ॐ नमः शिवाय

भगवान् वेदव्यासद्वारा प्रणीत स्कन्दमहापुराणअन्तर्गत

# हिमवत्खण्ड

★ नेपालमाहात्म्य

★ पशुपतिपुराण

★ गण्डकीमाहात्म्य

**नेपाली अनुवादसहित**



ग्रन्थसम्पादक/ अनुवादक

प्रा. डा. वेणीमाधव ढकाल

संस्कृत-विद्याशिरोमणि



आसिन्धु-ब्रह्मपुत्रान्त-मानसादि-समन्वितः ।
अखण्डहिमवत्खण्डः संक्षेपात् परिचीयताम् ॥

सिन्धुप्रदेशदेखि ब्रह्मपुत्रसम्म फैलिएको र मानस आदि विशिष्ट सरोवरहरूले सुशोभित हिमालयपरिपालित विशाल एवं अखण्ड भूखण्ड हिमवत्खण्डको परिचय, विशेषता र महिमाबारे संक्षेपमा प्रकाश पारिएको यस हिमवत्खण्डग्रन्थको अध्ययन गरी पाठकहरूले समग्र हिमवत्खण्डको परिचय प्राप्त गर्नुहुनेछ।

- योगी नरहरिनाथ

ॐ गणपतये नमः

ॐ नमः शिवाय

भगवान् वेदव्यासप्रणीत स्कन्दमहापुराणअन्तर्गत

# हिमवत्खण्ड

## नेपालमाहात्म्य

## पशुपतिपुराण

## गण्डकीमाहात्म्य

**योगी नरहरिनाथनामक नेपाली भाषानुवादसहित**


अभिनव सम्पादन एवं अनुवाद

प्रा. डा. वेणीमाधव ढकाल

संस्कृतविद्याशिरोमणि

अध्यक्ष

नेपाल संस्कृत विश्वविद्यालय

सेवा आयोग



**विद्यार्थी पुस्तक भण्डार**

प्रकाशक तथा वितरक

भोटाहिटी, काठमाडौं

| | | |
|---|---|---|
| पुस्तक | : | **हिमवत्खण्ड**<br>**(अभिनव सम्पादन र योगी नरहरिनाथनामक नेपाली भाषानुवादसहित)** |
| लेखक | : | **प्रा. डा. वेणीमाधव ढकाल** |
| प्रकाशक | : | **विद्यार्थी पुस्तक भण्डार**<br>भोटाहिटी, काठमाडौं<br>फोन नं.: ४२२७२४६, ४२४५८३४, ४४२३३३३<br>E-mail : vidyarthi_pub@yahoo.com<br>Web : vpb.com.np |
| संस्करण | : | प्रथम, २०७५ |
| सर्वाधिकार | : | प्रकाशकमा |
| मूल्य | : | रु. १६००/- |
| ISBN | : | 978-99946-1-998-6 |
| कम्प्युटर | : | विद्यार्थी डेस्क |
| मुद्रक | : | मोनाज अफ्सेट प्रेस |

# पशुपतिवन्दना



ध्यायेन्नित्यं महेशं रजतगिरिनिभं चारुचन्द्रावतंसं
रत्नाकल्पोज्ज्वलाङ्गं परशुमृगवराभीतिहस्तं प्रसन्नम्।
पद्मासीनं समन्तात् स्तुतममरगणैर्व्याघ्रकृत्तिं वसानं
विश्वाद्यं विश्ववन्द्यं निखिलभयहरं पञ्चवक्त्रं त्रिनेत्रम्॥

## समर्पण




आदिनाथप्रवर्तित नाथयोगसम्प्रदायका मुकुटमणि; महायोगी गुरु गोरक्षनाथपरम्पराका योगिशिरोमणि;
षडङ्ग वेद, पुराण, इतिहास तथा पुरातत्त्वका विलक्षण ज्ञाता एवं प्रवक्ता; काव्य, महाकाव्य,
अन्योक्तिकाव्य एवं उपदेशप्रधान, चिन्तनप्रधान सैकडौं ग्रन्थरत्नका प्रणेता महान् साहित्यकार
हिमवत्खण्डका प्रथम अन्वेषक, सम्पादक एवं अनुवादक नेपाल-आमाका सच्चा सपूत
वाग्देवतावतार ब्रह्मलीन योगी नरहरिनाथज्यूको शिवमय आत्मामा
अभिनव सम्पादन र अनुवादद्वारा समलङ्कृत
हिमवत्खण्ड समर्पण गर्दछु।

*त्वदीयं वस्तु गोविन्द ! तुभ्यमेव समर्पये।*

– *सम्पादक*

# शुभकामना

ब्रह्म, पद्म, विष्णु, शिव, भागवत, नारद, मार्कण्डेय, अग्नि, भविष्य, ब्रह्मवैवर्त, लिङ्ग, वाराह, स्कान्द, वामन, कूर्म, मत्स्य, गरुड र ब्रह्माण्ड, यी १८ पुराणहरूमध्ये मूर्हवनि स्वामी एवं ऋषि अगस्त्यको संवादबाट शुरु भएको स्कन्दपुराणको मेरुखण्डअन्तर्गत अनेकौं भागमा विभक्त यो हिमवत्खण्ड स्कन्दपुराणको शिरोभागका रूपमा रहेको छ । यस खण्डमा विश्वोत्तुङ्ग, विश्वकौतूहलर्धक, विश्वान्वेषण विषय र विश्वविख्यात नगाधिराज हिमालयको पौराणिक इतिहास एवं भूगोलको धार्मिक–आध्यात्मिक विवेचन गरिएको छ । नेपालभन्दा इतरका देशमध्येका प्रेसहरूबाट प्रेससेवा नपाइरहेको अप्रकाशित महत्त्वपूर्ण भागलाई नेपाल राष्ट्ररत्न योगी नरहरिनाथज्यूको शुभसङ्कल्प र सक्रियतामा प्रथम पटक वि. सं. २०१३ सालमा प्रकाशित हिमवत्खण्डलाई विद्वद्वरेण्य प्रा. डा. वेणीमाधव ढकालज्यूले व्याकरण–साहित्यात्मक संस्कृत भाषारूपी भूषणबाट विभूषित, सरलतारूपी वस्त्रबाट सुसज्जित तथा नेपाली भाषारूपी तिलकद्वारा सुशोभित तुल्याई भक्तजनसमक्ष प्रस्तुत गर्नुभएको छ ।

हाम्रो हिमशृङ्खला सनातन वैदिक राष्ट्र नेपालको शिरोमुकुट पनि हो । अगस्त्य, लोमश, कागभुसुण्डी, च्यवन, व्यास जस्ता ऋषिमुनि–महर्षि एवं रूरूकन्याजस्ता प्रसिद्ध सिद्ध–सन्तहरूको तपःस्थली जगज्जननी माता सीता र शान्तिका अग्रदूत भगवान् बुद्ध जस्ता विभूति र शिवपरिवारको निवासस्थल कल्याणमय पाशुपतमहिमाले भरपूर सम्पूर्ण सनातनीहरूको आस्था र श्रद्धाको केन्द्र मुक्तिद्वार, कुशावर्त, दामोदरकुण्ड, भगवान् शालग्रामगर्भा विश्वकी एकमात्र गण्डकी नदी आदि अनेकौं तीर्थहरूले सुसज्जित सर्ववन्दनीय हिमवान् माछापुच्छ्रे, धवलागिरि, अन्नपूर्णा आदि हिमालयहरूको महिमाले परिपूर्ण हिमवत्खण्डनामक यो ग्रन्थ स्कन्दपुराणको शिरोमुकुट नै भनिएको छ। त्यस मुकुटलाई बौद्धिक आभाद्वारा सुशोभित गर्ने कार्य प्रा. डा. ढकालज्यूले गर्नुभएको छ।

ईश्वरीय अभेदसत्ता–तथ्यकारणले स्वयं वासुदेव भगवान् सदाशिवको उपासना गर्नुहुन्छ भने शिवपरिवार पनि भगवान् वासुदेवको उपासना गर्नुहुन्छ। यस्तो अभेददर्शनले युक्त दिव्य अमृतमय पौराणिक वाङ्मयको अनुवाद, लेखन, सम्पादन र प्रकाशन गरी निष्कामभावले सेवा गर्नुहुने नेपाल संस्कृत विश्वविद्यालय, सेवा आयोग अध्यक्ष प्रा. डा. वेणीमाधव ढकालज्यू एवं विद्यार्थी पुस्तक भण्डार, भोटाहिटी काठमाडौंका अध्यक्ष, योगानुरागी श्री शान्त गौतमज्यूको सारस्वत साधनले अझै तीव्र गति लिओस् भनी विद्याधिष्ठात्री भगवती सरस्वतीसँग कोटिशः प्रार्थना गर्दै यस ग्रन्थको लोकप्रियताका लागि हार्दिक मङ्गलमय शुभाकामना व्यक्त गर्दछु। श्री राधाकृष्णार्पणमस्तु।

ॐ शान्तिः ! ॐ शान्तिः !! ॐ शान्तिः !!!

मिति : २०७५।०१।०१ गते

राधाविहारीशरण

योगी दर्शन : **'हिमवत्खण्डको मौलिक पहिचान नै विश्वमानवसमुदायको मौलिक पहिचान हो।'**

दर्ता : काठमाडौं जिल्ला प्रशासन-९१६ ॐ ॐ गौः श्रीः शिवौ वेदाः समाज कल्याण परिषद आवद्धता : ४१६०२

आत्मा खलु विश्वमूलम् ! वेदोऽखिलो धर्ममूलम् ! कृण्वन्तो विश्वमार्यम् !



# श्रीबृहदाध्यात्मिकपरिषद्





योगी नरहरिनाथद्वारा वि.सं. २०२२ ... १ मा संस्थापित
(कोटिहोमस्थली-१२४१) गोरक्षनाथपीठ, सिद्धाचल, मृगस्थली
पोष्टबक्स नं. १८५९, वेभसाईट yoginaraharinath.com फेसबुक briaap mrigasthali
इमेल : briaap2022@gmail.com/info@yoginaraharinath.com

पत्र संख्या
९८४/...../.....

स्थायी लेखा नम्बर (PAN)
६०३२६६४२७

## – शुभकामनाका दुई शब्द –

अपि स्वर्णमयी लङ्का न मे लक्ष्मण रोचते, जननी जन्मभूमिश्च स्वर्गादपि गरीयसी, दशाननवधपछि राजाविहीन भएको लङ्कामा राजा भइदिएर लङ्काको राज्यभार सम्हालिदिन विभीषण र लक्षणले मर्यादापुरुषोत्तम श्रीरामलाई आग्रह गरेपछि उहाँका मुखारविन्दबाट निस्केको पवित्र वचन हो यो। लक्ष्मणलाई सम्बोधन गर्दै श्रीरामले भन्नुभएको थियो – "हे लक्ष्मण! 'सुनैसुनले भरिएको भए पनि यो लङ्का मलाई प्रिय छैन किनभने जन्म दिने माता र जन्मभूमि स्वर्गभन्दा पनि उत्तम हुन्छन्। तसर्थ मलाई मातृभूमिको सेवाबाट वञ्चित नगराइयोस्।" यसरी भगवान् श्रीरामले लङ्कामा गरेको यो उद्घोष सबैका निमित्त प्रेरणादायक बनेर रहेको छ।

स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्ड कृति सपादलक्षशिखरिणीप्रदेश (सवालाख पर्वतमालाहरूको देश) को भूगोल, इतिहास र संस्कृतिको वर्णनात्मक विवरणसहितको महत्त्वपूर्ण अभिलेख रहेको अमूल्य कृति हो। आसिन्धु–ब्रह्मपुत्रान्त–मानसादि–समन्वितः। अखण्डहिमवत्खण्डः संक्षेपात्परिचियताम्॥ मनेर राष्ट्रगुरु योगी नरहरिनाथले पनि यस कृतिलाई उच्च प्राथमिकता दिई वि. सं. २०१३ सालमा पुस्तकाकारमा प्रकाशन गरिदिएर हिमवत्शृङ्खलाका वरिपरि बस्ने एवं सम्पूर्ण मानवजातिको कल्याणका निमित्त ठूलो उपकार गर्नुभएको तथ्य कसैबाट लुकेको छैन। त्यसकारण हिमवत्खण्ड प्रकाशनको मूल श्रेय पनि श्रद्धेय योगीजीकै नाममा सदा सर्वदा अटल रहिरहने नै छ। राष्ट्र, राष्ट्रियता र राष्ट्रिय पहिचानप्रति मातृवत् स्नेह राख्ने सम्पूर्ण मानवजातिका निमित्त यसको ज्ञान अमृततुल्य रहेको छ। योगीजीको उक्त सत्प्रयासमा उहाँलाई मूल पाण्डुलिपि उपलब्ध गराउनुहुने विद्वान् पण्डित पद्मनाभ केशरी अर्ज्याल, पण्डित रामशरण झा, गोविन्दहरि जङ्गम, पण्डित कृष्णप्रसाद भट्ट एवं पण्डित अनङ्गनाथ पौड्याल र एकजुट भएर सम्पादन प्रकाशनमा सहयोग गर्नुहुने सयौं विद्वज्जनहरूको स्तुत्य प्रयासलाई स्मरण गर्दै उहाँहरूप्रति हार्दिकतापूर्वक कृतज्ञता प्रकट गर्दछौं। विश्वमानवसमुदायको कल्याणार्थ देवनागरी संस्कृत, नेपाल भाषा (नेवारी) र मैथिल (मिथिला) लिपिमा लेखिएका ती पाण्डुलिपिका मूल प्रतिहरू पनि योगी नरहरिनाथ स्मृति पुस्तकालय तथा सङ्ग्रहालय, मृगस्थलीमा आजपर्यन्त सुरक्षित नै राखिएका छन्; चाहिएको समयमा उपयोग गर्नसक्ने अवस्थामै रहेका छन्।

हतार हतारमा प्रकाशन गरिएको ग्रन्थको प्रथम संस्करणमा आत्मतृप्त हुन नसक्नुभएका वरेण्य विद्वान् योगी नरहरिनाथले चाहेर पनि उहाँको जीवनकालपर्यन्त यसको दोस्रो संस्करण प्रकाशनमा आउन सकेन। बरु छिटपुट रूपमा आवश्यकता र सामर्थ्यअनुसार यसका अलग अलग भागहरू मात्रै प्रकाशन गर्ने कार्यहरू भने भई नै रहे; साङ्गोपाङ्ग इतिवृत्त भने आउन सकेन। मानवसमाजको आवश्यकता महसुस गरी सो को परिपूर्तिका निमित्त गरिएका ती सत्प्रयासहरूका लागि पनि हामी हार्दिकतापूर्वक कृतज्ञता प्रकट गर्दछौं। सबै विद्वज्जनहरूप्रति श्रद्धाभाव प्रकट गर्दछौं।

वि.सं. २०१३ सालमा प्रकाशित मानवसमाजका निमित्त कल्याणकारी उक्त ग्रन्थ दिनप्रतिदिन दुर्लभ हुँदै गइरहेको थियो। त्यसैले यथारूप पुनःप्रकाशन गरेरै भए पनि समाजलाई दिनुपर्दछ भन्ने उद्देश्यले श्री बृहद् आध्यात्मिक परिषद्ले पुनःप्रकाशनको तयारीलाई अघि बढाइरहेकै अवस्थामा विद्वान् गुरु एवम् यस परिषद्का सल्लाहकार श्रद्धेय प्रा. डा. वेणीमाधव ढकालज्यूको प्रयास हाम्रा अगाडि उपस्थित भयो। हामीलाई वैशाख–जेठको टन्टलापुर चर्को घाम लागेको समयमा अग्निको लप्काले डढाइरहेको खरको झुपडीमाथि चीसो पानीको फोहरा खन्याएजस्तो भयो। श्रद्धेय ढकालज्यूको सत्प्रयासले हामीलाई आह्लादित तुल्यायो। हाम्रा सबै धर्मशास्त्रहरूले पनि भोकले चाउरिएकालाई भोजन दिनु र तिर्खाएकालाई जल दिनु उपकार हो भन्ने आदर्शलाई अघि सारेका छन्। हिमवत्खण्डजस्तो दुर्लभ र दुर्भेद्य कृतिको अभिनव सम्पादन सम्पन्न गरी यथाशक्य चाँडो प्रकाशन गर्ने लक्ष्यका साथ विद्वान् गुरु प्रा. डा. वेणीमाधव ढकालज्यूको प्रस्तुत प्रयासले समग्र मानवसमाजलाई अत्यावश्यकीय भैसकेको अन्न र जल प्रदान गरेको महसुस गरेको छु। सयौं विद्वान्हरूले वि.सं. २००४ सालमा सुरु गरेर २०१३ सालमा मात्र प्रकाशन हुन सम्भव भएको यस ग्रन्थलाई अञ्जनीपुत्र हनुमान्ले द्रोणाचल पर्वत जुरुक्कै उठाएजस्तै वा द्वापरयुगमा श्रीकृष्णले गोवर्द्धन पर्वतलाई उठाएर लोककल्याण गरे जस्तै हिमवत्खण्ड ग्रन्थको

आद्योपान्त व्याख्या गरेर मानवसमाजका अघिल्तिर पस्किदिनसक्नु सामान्य व्यक्तिका लागि असम्भव कार्य नै हो। यसप्रकारको पराक्रम त वास्तविक तपोनिष्ठ साधकहरूमा मात्र यदाकदा देख्न र सुन्न पाइन्छ। यस अर्थमा प्रा. डा. वेणीमाधव ढकालज्यूको यस प्रयासले हिमवत्खण्डको पवित्र भूमि यथार्थमै महान् ऋषिमुनि र विद्वान्हरूको जन्मस्थल, साधनास्थल एवम् तपोभूमि हो भन्ने तथ्यलाई एकपटक फेरि प्रमाणित गरिदिएको छ। यस पुण्यभूमिमा यस्ता साधकहरू पुनः पुनः अवतरण भइरहून्; हिमवत्खण्डको सौन्दर्य सदैव चम्किइरहोस् र लोकल्याणको मार्ग अवरुद्ध हुन नपाओस् भन्ने कामना गर्दछु।

यो कस्तो संयोग हो कि पालपा, पोरकनी ठिमुरे निवासी प्रा. डा. वेणीमाधव ढकालज्यू उत्तरभारतको ऋषिकेशस्थित नेपाली संस्कृत महाविद्यालयमा अध्ययन गरी बाबा कालीकमली महाविद्यालयमा अध्यापनरत रहँदा नेपालका विद्वान् राष्ट्रगुरु योगी नरहरिनाथले –

'वेणीमाधव ! पत्रमत्रभवतः प्राप्तं झटित्युत्तरं,
साशिःप्रेषितमेतदेव भवदाह्वानं प्रपन्नान्वितम्।
गङ्गायाः सरयूसमागमकथा तथ्या च पथ्या नृणां,
कालीदासमुखै रसेन कथिता किं दुःखमत्रागमे ॥'

भनेर बोलाई उहाँलाई उत्तरभारतको बिछियास्थित गिरीजापुरीमा स्वयम् योगीजीद्वारा स्थापित सरयू संस्कृत विश्वविद्यालयको शिक्षाध्यक्ष पदमा नियुक्त गर्नुभएको रहेछ। सरयू संस्कृत विश्वविद्यालयको अध्यक्षमा योगी नरहरिनाथ, उपकुलपति डा. स्वामी प्रपन्नाचार्य र शिक्षाध्यक्ष वेणीमाधव ढकाल रहनुभएको देखिन्छ। राष्ट्रगुरु ब्रह्मलीन भइसक्नुभएको यत्तिका वर्ष व्यतीत भइसकेको अवस्थामा श्रद्धेय वेणीमाधव ढकालज्यू हिले फेरि योगी नरहरिनाथकै सत्प्रयासमा स्थापित नेपाल संस्कृत विश्वविद्यालय, दाङको सेवा आयोगाध्यक्षमा कार्यरत हुनपुग्नुभएको छ। योगीजीसँगको सत्सङ्गत रहेकाले श्रद्धेय प्रा. डा. वेणीमाधव ढकालज्यूकै स्वीकृतिमा श्री बृहद् आध्यात्मिक परिषद्ले मिति २०७५ आषाढ ३ गतेको बैठकद्वारा श्री बृहद् आध्यात्मिक परिषद्को विधान, २०७२ को परिच्छेद ४ (१) बमोजिम सर्वसम्मत निर्णय गरी उहाँलाई परिषद्को सल्लाहकारपदमा मनोनयन गरेको थियो। योगी नरहरिनाथले गोरक्षग्रन्थमालाको ६९ औं पुष्पका रूपमा वि.सं. २०१३ साल मंसिर महिनामा योगप्रचारिणी महासभा, गोरक्ष टिल्ला, काशीबाट प्रथम प्रकाशन गर्नुभएको हिमवत्खण्डको अभिनव सम्पादन गरी दोस्रो संस्करणका रूपमा प्रकाशनका लागि अहर्निश सत्प्रयासका निमित्त पनि प्रा. डा. वेणीमाधव ढकालज्यूको कलम चल्नु सानो संयोगको विषय पक्कै होइन। महायोगी गोरक्षनाथ र योगी नरहरिनाथजस्ता सिद्धपुरुषहरूको आशीर्वाद एवम् कृपाविना एउटै व्यक्तिमाथि यति धेरै संयोग जुट्न किमार्थ सम्भव देखिँदैन।

कविर्मनीषी परिभूः स्वयम्भूः भनेझैं निर्णयसिन्धुः, गणेशपुराणम् जस्ता अत्यन्त उत्कृष्ट ग्रन्थहरूलगायत लिच्छविकालिकानामभिलेखानां साहित्यिकमनुशीलनम्, मल्लकालिकानां नाटकानां विश्लेषणात्मकमध्ययनम्, शैलेश (नेपाली खण्डकाव्य), ज्योतिष्मती मुमा (नेपाली खण्डकाव्य), दिव्यलक्ष्मी (स्मृतिकाव्य), स्वर्गद्वारी के महाप्रभु, अर्जुन (शोककाव्य) आदि सृजना गरेर हिन्दुधर्म, हिन्दुसंस्कृति, हिन्दुसभ्यता एवम् संस्कृत वाङ्मयको क्षितिजलाई आलोकित तुल्याइसक्नुभएका विद्वान् पुरुष प्रा. डा. वेणीमाधव ढकालज्यूको लेखनी पुनः हिमवत्खण्डको अभिनव सम्पादनका निमित्त जुर्मुराउनु सम्पूर्ण विश्वमानवसमुदायका निमित्त अत्यन्त ठूलो गौरव एवम् सौभाग्य पनि हो। तसर्थ, योगी नरहरिनाथको कदमलाई एक पाइलो भए पनि अगाडि धकेल्दै जाने यात्राको लक्ष्यलाई अर्जुनदृष्टि बनाई कटिबद्धताका साथ हिमवत्खण्डजस्तो महत्त्वपूर्ण ग्रन्थको अभिनव सम्पादन गर्नुहुने विद्वत्पुरुष प्रा. डा. वेणीमाधव ढकालज्यू र उहाँको प्रयासलाई सुगन्धित फलका रूपमा समाजका सामु पुर्‍याउनका निमित्त प्रकाशनको अभिभारा आफ्नो काँधमा थापेर स्तुत्य कार्य गर्ने श्री विद्यार्थी पुस्तक भण्डारलाई हार्दिक नमन गर्दछु र शुभकामना टक्र्याउँदछु। त्यसका साथै यस ग्रन्थका निमित्त आफ्नो शुभकामना दिनुहुने सम्पूर्ण विद्वत्जनहरूप्रति पनि हार्दिक धन्यवाद व्यक्त गर्दछु।

ॐ शिव गोरक्षनाथ ! जय नरहरे !!

भवदीय,

(विश्व के.सी. पोखरेल)
महासचिव,
श्री बृहद् आध्यात्मिक परिषद्
गोरक्षपीठ, मृगस्थली काठमाडौं।
२०७५ मंसिर २४, सोमबार।

जि.प्र.का. द.नं. ५८१/०६६ स.क.प. आ.नं. २८७६७/०६६




आयो यो कलिको कराल भूमरी छोपेर चारैतिर, आँखा बन्द भए कलाकृति गए मनमा छ सारै पिर।
फालौं जाल पराइका हित चिनौं मैत्री जगत्मा गरी आफ्नै संस्कृतिमा डटौं मिली उठौं आयो परीक्षा घडी ॥ - योगी नरहरिनाथ

# योगी नरहरिनाथ ट्रष्ट आध्यात्मिक परिषद

केन्द्रीय कार्यालय– बानेश्वर, काठमाडौं, नेपाल

फोनः ०१–४४९५६६३, ९८४१७०९०६५ पो.व.नं.: ३१७१

E-mail: yoginaraharinath@gmail.com, facebook.com/yoginaraharinathtrust

## शुभकामना

नेपाल बहुधार्मिक, बहुभाषिक, बहुसांस्कृतिक र बहुजातीय विविधताले सजिएको गणतन्त्रात्मक राष्ट्र हो। भूगोलका आधारमा नेपाल ९३ औं ठूलो राष्ट्रमा पर्दछ। पुराण, महाभारत आदिमा नेपालको उल्लेख पाइन्छ। सत्ययुगमा सत्यवती, त्रेतायुगमा तपोवनी, द्वापरयुगमा मुक्तिसोपाना र कलियुगमा नेपालिकापुरी नामले यस भूमिकालाई चिनिन्थ्यो। पुराणहरूमा नेपाललाई पाशुपतक्षेत्र, मिथिला, किरातदेश आदि नामले पनि संवोधन गरेको पाइन्छ। महाभारतमा पनि नेपालविषये ये च राजानस्तानवाजयत् भनी उल्लेख गरिएको छ। यही भूमिमा जनकको राज्य भयो। त्रेतायुगमा जगज्जननी सीताले बाल्यकाल यहीं बिताएकी थिइन्। यस भूमिमा 'ने' नाम गरेका ऋषिले तपस्या गरी यहाँका जनता र शासकलाई पालनपोषण एवं मार्गदर्शन गरेको हुनाले यस देशलाई नेपाल भनिएको कथन प्रसिद्ध छ। विश्वका १० अग्ला हिमालमध्ये ८ वटा यहीं पर्छन्। विश्वको अग्लो सगरमाथालाई संसार डुब्दा पनि नडुबेको पवित्रस्थल मानिन्छ। संसारमा पाइने पाँचै किसिमका हावापानी, अन्नबाली, जीवजन्तु उपलब्ध भएकाले ऋषिमुनि र महापुरुषले साधनाका लागि यही धरालाई रोजे। यही भूमिमा ज्ञानविज्ञानका संवाहक गुरुतर पुस्तकहरू प्रकाशित भई संसारमा फैलिन थाले।

एक पुस्ताको ज्ञान, अनुभव आदिलाई दोस्रो पुस्तामा हस्तान्तरण गर्न सजिलो पर्ने माध्यम नै पुस्तक हो। पुस्तकको कलेवर र पानाहरू पुराना भए पनि त्यसभित्र निहित ज्ञान सधैं ताजा हुन्छ। त्यसैले त पुस्तक पूजनीय हुन्छ, महनीय हुन्छ, पठनीय हुन्छ र सङ्ग्रहणीय हुन्छ। पितापुर्खाले पुस्तक लेखेर त्यसका माध्यमबाट सन्तानका लागि अमूल्य निधि छोडेर गए। पछिल्लो समयमा किताब लेख्नेको संख्या बढे पनि पुस्तक लेख्ने स्रष्टाको खडेरी पर्दै गएको देखिन्छ। विदेशीले लेखेपछि, विदेशीले भनेपछि, विदेशीले स्वीकारेपछि आँखा खुल्ने र पत्याउने लहरले पछिल्लो समयमा अर्को विडम्बनालाई निम्त्याएको छ। स्वगृहे पायसं त्यक्त्वा भिक्षामटति दुर्मतिः भनेझैं आफ्नो घरमा पाकेको खीर छोडेर भिक्षाटनमा निस्कने दुर्बुद्धिप्रेरित आनीबानीले हामी हाम्रै सम्पदा र सम्प्रभुताबाट विमुख हुँदै गएका छौं। केही अन्वेषकहरूले खोजेका तथ्यहरूलाई प्रकाशमा ल्याउन वा प्रकाशनमा आएकालाई पुनःप्रकाशनमा ल्याउने काम सुषुप्तिमा रहेको छ। स्रष्टालाई हातमुख जोड्नै गाह्रो छ। दिनप्रतिदिन नेपालमा यो क्रम घटाउँदै लगेर हटाउने प्रयास भएको देखिँदैन। त्यसैले विद्वान् र विद्याको खडेरी पर्दै गएको छ।

यस समयमा आदरणीय प्रा. डा. वेणीमाधव ढकालज्यूको ज्ञानका दिव्यसाधन पुस्तकप्रतिको अध्यवसाय देख्दा गर्व र गौरव लाग्दछ। विभिन्न विधाका आकारमा भीमकाय र ज्ञानमा पारदर्शी पुस्तकहरूको रचना र सम्पादन गर्नुभएका ढकालज्यूले गणेशपुराण, निर्णयसिन्धु, आह्निकसूत्रावलि, श्रीमद्देवीभागवत आदि शास्त्रीय ग्रन्थलाई नेपालीभाषामा अनुवाद गर्नुभएको कार्य प्रशंसनीय मात्र होइन स्तुत्य पनि रहेको छ। उहाँका पावन कृत्यहरूबाट संस्कृतभाषा नबुझ्ने धर्मानुरागीहरूलाई ठूलो राहत मिलेको छ। यही क्रममा भर्खरै उहाँले योगिराज एवं राष्ट्रगुरु योगी नरहरिनाथज्यूको अथक परिश्रम र तपस्याबाट प्राप्त हिमवत्खण्डनामक ग्रन्थलाई अनुवाद, संशोधन र सम्पादनको कार्य सम्पन्न गरी प्रकाशन गर्न लाग्नुभएको छ। वि.सं. २०१३ सालमा जन्मिएको हिमवत्खण्ड वि.सं. २०७४ सालमा हृष्टपुष्ट भई जवानीमा प्रवेश गर्दैछ। भानुभक्त आचार्यलाई मोतीराम भट्टले सम्झिएझैं प्रा. डा. ढकालज्यूले योगीज्यूको साधनालाई पुनः सम्झाई नेपाली नरनारीहरूलाई स्वराष्ट्र, स्वसंस्कृति, स्वधर्म र स्वाभिमानतर्फ अग्रसर हुन अभिप्रेरित गर्नुभएको छ।

असीहजार श्लोक भएको स्कन्दपुराणको सुमेरुखण्डअन्तर्गत पर्ने हिमवत्खण्ड नेपाल र नेपालीका लागि सांस्कृतिक प्राणस्पन्दनका रूपमा रहेको छ। यो नेपालको पहिलो लिपिबद्ध इतिहास हो। यस अर्थमा वेदव्यासले आफ्नो जन्मभूमिको बयान सबैभन्दा ठूलो पुराणमा गरी मातृभूमिलाई नमन अर्पण गरेका छन्। यसै क्रमलाई योगी नरहरिनाथज्यू र वेणीमाधव ढकालज्यूले निरन्तरता दिनुभएको छ। वास्तवमा उहाँहरू दुबै मनीषीहरूको योगदान इतिहासमा अस्ताउनै नसक्ने गरी लेखिनेछ। हिमवत्खण्ड, पशुपतिपुराण, नेपालमाहात्म्य र गण्डकीमाहात्म्यलाई समेत ढकालज्यूले यस ग्रन्थमा एकाकार पार्नुभएको छ। चार पुरुषार्थ धर्म, अर्थ, काम, मोक्षको संयोजनको प्रत्यभिज्ञा यसमा प्रष्टै देख्न पाइन्छ। एउटा नेपाली हुनुका नाताले, एउटा संस्कृतिप्रेमीको सम्बन्धले, एउटा विद्वान्को हैसियतले, संस्कृतभाषाको ज्ञाता भएको कारण उहाँले यस कार्यलाई सरल, सहज र सुबोध्यरूपमा सम्पन्न गर्नुभएको छ। राष्ट्रगुरु योगी नरहरिनाथज्यूले दाँतबाट पसिना बगाएर नेपाल र नेपालीका लागि लगाउनुभएको गुनलाई ढकालज्यूले आफ्नो प्रतिभाले उज्ज्वल बनाएर पाठकसमक्ष प्रस्तुत गर्नुभएको छ। अनवरत सारस्वत सेवामा समर्पित उहाँले योगी नरहरिनाथज्यूको सान्निध्यमा रही शास्त्रशिक्षा र कविशिक्षासमेत प्राप्त गर्नुभएको थियो। त्यसबेलादेखि नै योगीज्यूप्रति डा. ढकालको भावभक्ति बढेको देखिन्छ।

राष्ट्रगुरुहरू योगी नरहरिनाथज्यू र डा. स्वामी प्रपन्नाचार्यज्यूका साथ भारतको बहराइच जिल्लामा सञ्चालित सरयू संस्कृत विश्वविद्यालयको साहित्य विभागाध्यक्ष पदमा क्रियाशील प्रा. ढकालज्यूलाई योगीज्यूले आशुकविको उपाधि दिनुभएको प्रसङ्ग पनि यहाँ संस्मरणीय छ। डा. स्वामी प्रपन्नाचार्यज्यूका सतीर्थ्य ढकालज्यूले नेपाल संस्कृत विश्वविद्यालयको सेवा आयोगको अध्यक्षजस्तो गरिमामय पदमा रहेर पनि लेखनीलाई निरन्तर लेखनकार्यमा सक्रिय तुल्याइरहनुभएको छ। यो उहाँको आफैंमा शुभकार्यप्रतिको स्नेह र विद्यानुरागको पराकाष्ठा हो भन्दा फरक पर्ने छैन।

अनेकौं संघसंस्थाबाट सम्मानित एवं पुरस्कृत ढकालज्यूको अधिकांश समय अध्ययन एवं अनुसन्धानमा अनवरत व्यतीत भइरहेको तथ्य प्रष्टै छ। प्रा. डा. ढकालज्यूले हिमवत्खण्डको अभिनव सम्पादन र अनुवाद गरेर इतिहासको क्षेत्रमा मात्र होइन धर्म, संस्कृति र परम्पराको संरक्षणमा पनि ठूलो गुन लगाउनुभएको छ। हिमवत्खण्डले नेपालका तीर्थस्थल, नदी, कुण्ड, वनपङ्क्ति, पावन प्रकृति आदिलाई राम्ररी समेटेको पाइन्छ। प्राचीनकालदेखि यो भूमि साधनाभूमि, देवभूमि, तपोभूमि र ज्ञानभूमिका रूपमा विश्वमा विख्यात छ। भारतवर्षभित्र मुख्यतः प्रसिद्ध पाँचखण्ड छन्–

खण्डाः पञ्च हिमालयस्य कथिता नेपालकूर्माचलौ।
केदारोद्वय जलन्धरोद्वय रुचिरः काश्मीरसञ्ज्ञोद्गन्तिमः॥

–स्कन्दुपराण, केदारखण्ड

नीलमतखण्ड भनेको हालको जम्मूकाश्मीर, जालन्धरखण्ड भनेको हिमाचल प्रदेश, केदारखण्ड भनेको गढवाल, मानसखण्ड भनेको कुमाऊ र हिमवत्खण्ड भनेको नेपाल हो। यी खण्डहरूमध्ये पनि हिमवत्खण्ड निकै पवित्रतम मानिन्छ। अधिकांश ऋषिमुनिहरूले यस हिमवत्खण्डलाई जन्मभूमि, कर्मभूमि र साधनाभूमि बनाएका छन्। हिमवत्खण्डमा पर्ने गण्डकी नदी र कौशिकी नदी एवं यिनका क्षेत्रहरूको अर्को महत्वपूर्ण गरिमा छ। योगिराज नरहरिनाथज्यूले गण्डकीक्षेत्रमा रहेको दमौलीलाई वेदव्यासको जन्म र कर्मभूमि मान्नुभएको छ। गण्डकीक्षेत्रभित्र पर्ने मुक्तिनाथधामले शैव र वैष्णव परम्पराको महिमा बोकेको छ। देवघाटक्षेत्रले यसको ओजमा अझै चमक भरेको छ। डा. ढकालज्यूले यसको महिमालाई हिमवत्खण्डभित्र समाविष्ट गरेर पाठकवर्ग, अनुसन्धानकर्ता र भावी अनुसन्धाताको पींढीलाई सोपान र सरणिको दिग्दर्शन गराउनुभएको छ।

नेपाल प्रज्ञाप्रतिष्ठान र भारतका विद्वान्हरूबाट नेपालमाहात्म्यको बारेमा चर्चा भए पनि त्यसका विषयवस्तुलाई अझ खोजपूर्ण र अर्थपूर्ण रूपमा प्रा. डा. ढकालज्यूले यस महनीय ग्रन्थमा प्रकाश पार्नुभएको छ। दुर्लभ हुन पुगेको पशुपतिपुराणले यहाँ समाविष्ट भएर नयाँ जीवन पाएको छ। अब एउटै पुस्तकमा हामीले हाम्रो इतिहास, सभ्यता, संस्कृति, भूगोल आदिका बारेमा जानकारी पाउन सक्ने भएका छौं। यस अर्थमा पनि प्रा. डा. ढकालज्यूको योगदान महनीय देखिन्छ। राष्ट्रगुरु योगी नरहरिनाथज्यूको सपना साकार बनाएकै कारण योगीज्यूबाट उहाँमाथि आशीर्वादको कृपावर्षा भइरहनेछ भन्ने दृढविश्वास लिएको छु। यसको प्रकाशन गरेर विद्यार्थी पुस्तक भण्डारले महत्वपूर्ण यज्ञमा चरु हाल्ने काम गरेका कारण उक्त संस्था पनि धन्यवादको पात्र बन्न पुगेको छ। अनूचान गुरुवर प्रा. डा. वेणीमाधव ढकालज्यूको चिन्तन यस्तै शुभकर्मप्रति मात्र प्रवृत्त होस् र उहाँको लेखनी यिनै महनीय कार्यमा अग्रसर हुँदै जाओस् भन्दै हाम्रो समिति एवं मेरो व्यक्तिगत तर्फबाट पनि शुभकामना व्यक्त गर्दछु। साथै अभिनव सम्पादन एवं संशोधित अनुवादका साथ प्रकाशनमा आउन लागेको हिमवत्खण्डको प्रकाशनमा यस संस्थाको पूर्ण स्वीकृति रहेको जानकारी गराउँदछु।

**शंकर पौडेल**

# विनम्रनिवेदन

नेपाल आमाका सपूत, वाग्देवताका अवतार र नाथसम्प्रदायका ज्योतिर्मय रत्न सन्तशिरोमणि योगी नरहरिनाथज्यूको सङ्कलन, सम्पादन र उहाँद्वारा अभिप्रेरित विद्वान्हरूको नेपाली रूपान्तरणका साथ वि.सं. २०१३ मा प्रकाशित हिमवत्खण्डको अभिनव सम्पादन र अनुवादका साथ प्रकाशनको पूर्वसन्ध्यामा सन्तोषपूर्वक हार्दिक उद्गार व्यक्त गर्दछु।

योगी नरहरिनाथ वाङ्मयमूर्ति तेजस्वी पुरुष हुनुहुन्थ्यो। उहाँसँग केही महिना सँगै बसी शास्त्रहरूको अनुसन्धान र काव्यकलाको प्रयोग गर्ने शुभअवसर पाएको हुँदा उहाँको क्षिप्रकारिता, विभज्यकारिता र सबैमा अतिविश्वास गर्ने स्वभावसँग म पूर्णतः परिचित छु। २०१३ साल आश्विनमा अनुवादका लागि भाग लगाएर दर्जनौं विद्वान्हरूका हातमा दिइएको यो हिमवत्खण्ड त्यसै वर्षको मार्गशीर्षमा मुद्रित भएर आयो। योगीजीले नेपालका पूर्व, पश्चिम र उपत्यकामा प्राप्त पाण्डुलिपि हेरी तीमध्ये अपेक्षाकृत शुद्ध मानिएको पाण्डुलिपिलाई प्रकाशनार्थ अग्रसारित गर्नुभयो। त्यसैको आधारमा विभिन्न विद्वान्हरूबाट धडाधड अनुवाद गरियो। योगीजीको क्षिप्रकारिताका सामु पर्खेर, हेरेर, विवेचन गरेर अनुवाद गर्ने कार्य सम्भव थिएन। उहाँको चतुरस्रमुखरित राष्ट्रवादले नेपालमा विश्वदुर्लभ हिमवत्खण्डको प्राप्ति र त्यसको नेपाली भाषामा अर्थाप्तिको अद्‌भुत घटनालाई विश्वसामु प्रस्तुत गर्न अत्यन्त आतुरता देखाइरहेको थियो।

योगीजी भन्नुहुन्छ– "अरू पौराणिक साहित्यझैँ यस हिमवत्खण्डमा पनि अनेक समयका रचना देखिन्छन् र प्राचीन लिपिका प्रतिलिपि परम्पराले गर्दा अनेक स्थल दुरूह एवं अन्यथा पनि हुन गएका छन्। हतपतका प्रकाशनमा समयाभाव र सामूहिक वस्तुस्थिति झल्काउन–

*यादृशं पुस्तकं दृष्टं तादृशं लिखितं मया। यदि शुद्धमशुद्धं वा मम दोषो न विद्यते॥*

अनेक प्रतिहरूमध्ये दिग्दर्शनका लागि अलिकति पाठभेद दिएर यथासाध्य शुद्ध र विशिष्ट पाठ दिइएको छ। अग्रिम संस्करणमा विशेष अनुसन्धान र परिशोधन गर्नुपर्नेछ।"

समयको महाप्रवाहमा उहाँबाट यस्ता सैकडौँ महत्त्वपूर्ण कार्य हुँदै गए। कहिले नेपाली इतिहासको खोजी, कहिले सन्धिपत्रको अनुसन्धान, कहिले विश्वविद्यालयको स्थापनाको भुटभुटी, कहिले विदेशयात्राको हुत्हुती त कहिले कृण्वन्तो विश्वमार्यम् सिद्धान्तको सापेक्षतामा यज्ञसंस्कृतिको उन्नयन गर्दै राष्ट्रव्यापी भ्रमण, यस्ता अनेकौं कार्यले योगीजीलाई पछाडि फर्कने मौका मिलेन। उहाँको अग्रिम संस्करणमा विशेष अनुसन्धान र परिशोधन गर्नुपर्नेछ भन्ने भनाइले मूर्तरूप लिन पाएन।

२०६५ सालमा विद्यार्थी पुस्तक भण्डारका अध्यक्ष श्री शान्त गौतमले हिमवत्खण्डको सम्पादनसहित पुनः अनुवाद र निर्णयसिन्धुको नेपाली टीकारचनाका लागि मलाई अभिप्रेरित गर्नुभयो। सर्वप्रथम हिमवत्खण्डको सम्पादन एवं अनुवाद गर्ने र त्यसपछि निर्णयसिन्धुको कार्य गर्ने परस्पर विचार, विमर्श भएपछि मैले हिमवत्खण्डको सम्पादन आरम्भ गरेँ। लगभग १३ हजार श्लोकसंख्या भएको हिमवत्खण्ड दीर्घ परम्परादेखि लिपिकरहरूद्वारा सार्दिँदै आएको हुनाले असंस्कृतज्ञ लिपिकरहरूको अज्ञानका कारण त्यसमा भरमार त्रुटि थिए। यसको शुद्ध सम्पादनको अर्थ कायाकल्प गर्नु नै थियो र फलामको चिउरा चपाउनु नै थियो। छन्द, व्याकरण र कोशका ग्रन्थ अगाडि राखेर कठोर अध्यवसाय गर्दै जाँदा आठ महिनामा एकसरो सम्पादन पूरा भयो। त्यसलाई दोहोर्‍याएर राम्ररी जाँची बुझी बौद्धिक छाप लगाउन भने बाँकी नै थियो।

समय वित्दै गइरहेको थियो। प्रकाशकसँग भएको पछिल्लो विचारविमर्शबाट निर्णयसिन्धुको टीकालेखन पूरा भएपछि मात्र हिमवत्खण्डलाई पूर्णता दिने निश्चय गरियो र त्यसैको पूर्णताका निम्ति अध्यवसाय चलिरह्यो। निर्णयसिन्धुमा डुबेर काम गर्दै जाँदा धेरै वर्ष बिते। त्यसै बीचमा आह्निकसूत्रावली र श्रीमद्देवीभागवतमहापुराणको टीकारचनामा व्यस्त हुँदा हिमवत्खण्डको बाँकी काम गर्नु छ भन्ने चिन्तनसमेत अवचेतन मनमा गुप्तवास बस्यो। २०७२ सालको आश्विन नवरात्रमा आह्निकसूत्रावली र देवीभागवतका टीका तयार भए र त्यसै वर्षको मार्गशीर्षमा आह्निकसूत्रावली प्रकाशित भयो। देवीभागवतले भने पालो पर्खिएर केही समयपछि मात्र प्रकाशनको अवसर पायो। भगवतीको कृपाले दुबै महान् ग्रन्थ अहिले जिज्ञासुका हातमा पुगिसकेका छन्।

२०७२ कार्तिकदेखि भने मरो सम्पूर्ण ध्यान यस अघि आफैंले गरेको हिमवत्खण्डको पूर्वसम्पादनलाई सूक्ष्मदृष्टिका साथ परिष्कृत बनाउनमा केन्द्रित रह्यो। अवधानताका साथ सम्पादनमा तल्लीन नहुँदासम्म हिमवत्खण्ड एकप्रकारले काँडाघारीजस्तो अगम्य वा दुर्गम नै थियो भने पनि हुन्छ। यसर्थ आरम्भमा हिमवत्खण्डभित्र पसेर सम्पादनको कार्य गर्न पनि रुचि र जाँगरले प्रायः साथ दिँदैनथे। भ्रष्ट भाषा, तमसुके शैली, परस्पर गाँजिएका विषयवस्तुको समावेशीकरणले यस ग्रन्थभित्रका रोचक र ज्ञानवर्धक विषयलाई ढाकिदिएका थिए। आफूले सम्पादन गर्ने क्रममा छहजारभन्दा बढी श्लोकहरूको शुद्धीकरण गरिसकेपछि अनुवाद गर्ने कार्य सहज र रुचिकर पनि भयो। पुराना विद्वान् अनुवादकहरूको अनुवादबाट पनि ठाउँठाउँमा ग्रन्थिभेदन गर्न सजिलो भयो।

अभिनवसम्पादन र अनुवादसहितको यस हिमवत्खण्डको प्रकाशनका लागि यी कार्यहरू भइरहँदा २०१३ सालदेखि २०७३ सालसम्मको ६० वर्षको अन्तरालमा योगीजीको प्रेरणाअनुसार हिमवत्खण्डको अनुवादमा सहभागी भएका विद्वान्हरू र अन्य ठूला ठूला विद्वान्हरूको समेत यसमा दृष्टि किन परेन ? यो मेरो आश्चर्य र जिज्ञासा दुबैको विषय बनिरहेको छ। यो कार्य मैले नै सम्पन्न गर्नुपर्ने नियत दैवी योजना थियो कि सायद ! यसकारण पनि म यसमा प्रवृत्त हुन उत्सुक बनें हुँला। भगवती भुवनेश्वरी, शक्तिमाता श्री लीलादेवीज्यू, मेरा परम श्रद्धेय विद्यागुरुहरू र मातापिताको आशीर्वाद ममा छँदै थियो। समय मिल्यो कि लेख्न थालिहाल्ने गरेर अगाडि बढ्दै जाँदा यो सानुवाद ग्रन्थसम्पादनको कार्य सम्पन्न भएको छ। सम्पादन पूर्ण नहोला तर एकहदसम्म सम्पन्न भएको छ भन्ने म ठान्दछु। यो सम्पादन र अनुवाद के कस्तो भयो भन्ने विषयमा मनस्वी एवं सम्पादनकलाका पारखी विद्वान्हरू नै निर्णायक हुनुहुनेछ। मैले त मेरा काव्यकलागुरु योगी नरहरिनाथज्यूको भनाइमा व्यक्त भएको अनुसन्धान र परिशोधनको धोको पूरा गर्नका लागि प्रयत्नमात्र गरेको हुँ। यसमा उहाँको शिवस्वरूप आत्माले मलाई आशीर्वाद दिनेछ भन्ने मैले विश्वास गरेको छु।

मैले गरेको यो कार्य नै सम्पूर्ण हो म भन्दिनँ। यसपछि पनि विद्वान्हरूले यसलाई अझ सुन्दर, अझ सार्थक र अझ प्रामाणिक बनाउन गम्भीरतापूर्वक अनुसन्धान गर्न सक्नुहुनेछ। यो त नरहरिनाथले खन्नुभएको हिमवत्खण्डको गोरेटोलाई अलिकति फराकिलो पारेर बनाइएको घोरेटोजस्तै मात्र बनेको होला भन्ने मेरो बुझाइ छ। यसलाई पनि मिही दृष्टि लगाएर परिष्कृत गर्दै विस्तृत राजमार्ग बनाउने काम त अझै बाँकी नै छ भन्ने मलाई लाग्छ। यसका लागि विद्वान्हरू अगाडि आउनुपर्छ र राष्ट्रको यस दुर्लभ सम्पदालाई संसारका सामु गौरवसाथ उभ्याउन उत्साहपूर्वक अघि बढ्नुपर्छ। एकल व्यक्तिले गरेको काममा त्रुटि, अपूर्णता, भ्रान्ति, अनवधानता, प्रमाद र अज्ञानको कालो छाया पर्न पनि सक्छ। ती सबै दोषलाई निराकरण गर्ने र ग्रन्थलाई अविकल र सर्वथा निर्दुष्ट बनाउने काम विद्वान् मनीषीहरूको हो। यसलाई गहनतापूर्वक अध्ययन गरेर न्यूनताहरूका सम्बन्धमा सूचना प्राप्त भएमा श्रद्धापूर्वक स्वीकार गरी अर्को संस्करणमा सच्याउने प्रयत्न गरिनेछ। भगवान् श्रीपशुपतिनाथको परम करुणाबाट नै यस्तो जटिल तर गौरवाधायक कार्य सम्पन्न गर्न मैले अवसर पाएको हुँ जस्तो लाग्छ। हिमवत्खण्डको शुद्धीकरण, अनुवाद र समीक्षाजस्तो गहन कार्यमा जीवनको महत्त्वपूर्ण समयलाई उपयोग गर्न पाउँदा मैले आफ्नो जीवन सार्थक भएको सम्झेको छु। यस पावन कार्यलाई पूर्ण तुल्याउँन धेरै सतीजन एवं सज्जनहरूले सहयोग गर्नुभएको छ, म उहाँहरूप्रति सदा ऋणी छु।

मलाई यस कार्यमा ऊर्जा र आशीर्वाद प्रदान गर्नुहुने परमपूजनीया श्री शक्तिमाता लीलादेवीज्यूका चरणकमलमा वन्दना गर्दै उहाँप्रति हार्दिक कृतज्ञता प्रकट गर्दछु। मेरो यस कार्यमा प्रवृत्ति भएकोमा हर्ष जनाउँदै पूर्णताका लागि आशीर्वाद एवं मन्तव्य प्रदान गर्नुहुने परमपूज्य स्वामी श्री राधाविहारीशरणज्यूका चरणारविन्दमा वन्दनासहित कृतज्ञता अर्पण गर्दछु। मलाई यस कार्यका लागि हृदयदेखि नै प्रेरणा प्रदान गरी सहयोग समेत गर्नुहुने विद्यार्थी पुस्तक भण्डारका अध्यक्ष श्री शान्त गौतमज्यूप्रति हार्दिक कृतज्ञता व्यक्त गर्दछु।

यस ग्रन्थको प्रकाशन हुन लागेकोमा हर्दिक प्रसन्नता व्यक्त गर्दै प्रकाशनका लागि शुभकामना प्रदान गर्नुहुने श्री बृहद् आध्यात्मिक परिषद् गोरक्षपीठ, मृगस्थली काठमाडौँका महासचिव श्री विश्व के.सी. पोखरेलज्यूप्रति कृतज्ञता ज्ञापन गर्दै यस ग्रन्थको प्रकाशनको पूर्वसन्ध्यामा सहर्ष मन्तव्य प्रदान गर्नुहु ने योगी नरहरिनाथ आध्यात्मिक ट्रष्टका अध्यक्ष श्री शङ्कर पौडेलज्यूप्रति पनि हार्दिक आभार व्यक्त गर्दछु।

नेपाली साहित्यका वरिष्ठ समालोचक, काव्यकार एवं विशिष्ट अनुसन्धाता सहस्रशिष्यगणद्वारा समादृत मूर्धन्य विद्वान् प्रा. डा. वासुदेव त्रिपाठीज्यू, न्यायविद्या र तन्त्रशास्त्रका अप्रतिम विद्वान् महान् साधक भक्तिसाहित्यका ऊर्जस्वल रचनकार प्रा. श्री विद्यानाथ उपाध्याय भट्टज्यू, धार्मिक, सांस्कृतिक र ऐतिहासिक क्षेत्रमा गहन अनुसन्धान

गरी नेपाली साहित्यको भण्डार भर्नुहुने यशस्वी विद्वान् प्रा. डा. जगदीशचन्द्र रेग्मीज्यू र ज्योतिष, धर्मशास्त्र, इतिहास एवं अभिलेखसाहित्यका अनुपम विद्वान् तथा अनुसन्धाता नेपाल प्रज्ञा प्रतिष्ठानका वर्तमान सदस्य प्रा. श्री दिनेशराज पन्तज्यूप्रति विनम्रतापूर्वक हार्दिक कृतज्ञताका वाक्कुसुम समर्पण गर्दछु। नेपाली एवं संस्कृत साहित्यका मूर्धन्य विद्वान् साहित्यकार एवं अनुसन्धाता प्रा. डा. नारायणप्रसाद खनाल, नेपाली संस्कृत साहित्यका विशिष्ट विद्वान् कवि एवं अनुसन्धाता प्रा. डा. जीवन अधिकारी र वैदिक वाङ्मयका प्रतिभाशाली विद्वान् अनुसन्धाता डा. रुद्र मिश्रले यस ग्रन्थका लागि महनीय मन्तव्य दिनुभएकोमा हार्दिक कृतज्ञता ज्ञापन गर्दछु।

यसै गरी यस ग्रन्थको निष्पत्तिमा तपोमय सक्रियतापूर्वक विशेष भूमिका निर्वाह गर्नुहुने वरिष्ठ साहित्यकार प्रा. डा. टीकाराम अधिकारीज्यूप्रति हार्दिक कृतज्ञता व्यक्त गर्दछु। यसको प्रस्तावनारचनामा आवश्यक सहयोग प्रदान गर्नुहुने वरिष्ठ साहित्यकार पूर्वमन्त्री डा. मोदनाथ प्रश्रितज्यू, नेपाल संस्कृत विश्वविद्यालयका पूर्वउपकुलपति प्रा. श्री माधवराज गौतमज्यू, नइ प्रकाशनका अध्यक्ष विशिष्ट साहित्यकार श्री नरेन्द्र प्रसाईंज्यू एवं वरिष्ठ साहित्यकार श्री इन्दिरा प्रसाईंज्यूप्रति हार्दिक कृतज्ञता व्यक्त गर्दछु। वैचारिक एवं वस्तुगत सहयोग प्रदान गर्नुभएकोमा नेपाल संस्कृत विश्वविद्यालयका पूर्वकुलसचिव प्रा. नीलमणि ढुङ्गानाप्रति आभार व्यक्त गर्दछु।

यसको निष्पत्तिका लागि सुझाव र वस्तुगत सहयोग प्रदान गर्नुहुने नेपाल संस्कृत विश्वविद्यालय बेलझुण्डी दाङ सेवा आयोगका पूर्वअध्यक्ष प्रा. श्री लेखनाथ आचार्य, ने.सं.वि. सेवा आयोगका वर्तमान सदस्य प्रा. श्री श्रीधर मजगैयाँ, प्रा. डा. नुरापति पोखरेल, योगसाधक अनुसन्धाता श्री टि.पी. धमला, सहप्रा.डा. माधवप्रसाद पाण्डे, सहप्रा. श्री मुकुन्द लामिछाने, त्रिशक्तिभक्त श्री भेषराज न्यौपाने एवं श्री परशुराम न्यौपाने एवं क्वालिटी लेजर प्रिन्ट बागबजार काठमाडौंका व्यवस्थापक श्री मुरारिराज पाण्डेप्रति हार्दिक कृतज्ञता प्रकट गर्दछु।

वेदान्ताचार्य श्री दीपक सापकोटाले हिमवत्खण्डको मूल भागको टङ्कण र भाषिक सम्पादनका साथ हिमवत्खण्डको परिशिष्ट भाग र थप परिशिष्टको समेत टङ्कण, थप परिशिष्टका कतिपय अंशको अनुवाद एवं भाषिक सम्पादनमा अहोरात्र खटेर कार्य सम्पन्न गर्नुभएकोमा म उहाँलाई साधुवाद अर्पण गर्दै आभार प्रकट गर्दछु।

महेश गुरुकुलम् देवघाटका स्नातक श्री अर्जुन ढकालले हिमवत्खण्डका १८८ अध्यायको नेपाली रूपान्तरणको भाषिक सम्पादन, गण्डकी माहात्म्य, नेपाल माहात्म्य र पशुपतिपुराणका केही अंशको अनुवादका साथै भाषिक सम्पादन समेत गरी परिशिष्टसमेत समग्र ग्रन्थको सेटिङ गरेर ग्रन्थलाई प्रकाशनोपयोगी तुल्याउने कार्यमा कठोर परिश्रम गर्नुभएकोमा म उहाँप्रति धन्यवाद ज्ञापनका साथ कृतज्ञता व्यक्त गर्दछु।

गुह्येश्वरी सहस्रनाम, दिव्यशिवसहस्रनाम, वाग्वतीसहस्रनाम, शिवाष्टोत्तरसहस्रनामका नेपाली अनुवादको र समग्र प्रस्तावनाभागको टङ्कण गरी यस ग्रन्थको निष्पत्तिमा सहयोग पुऱ्याउनुहुने नेपाल संस्कृत विश्वविद्यालय परीक्षा नियन्त्रण कार्यालय बेलझुण्डी दाङका कम्प्यूटर अपरेटर श्री दर्शन गौतमप्रति हार्दिक धन्यवादका साथ कृतज्ञता प्रकट गर्दछु। यस ग्रन्थको प्रारम्भिक सेटिङमा सहयोग गर्नुहुने श्री महेश पौडेललाई धन्यवाद ज्ञापन गर्दछु।

हिमवत्खण्डको अनुवाद एवं सम्पादन गर्दै गर्दा हिमवत्खण्डका प्रकाशित प्रतिहरूका साथै देवघाट र गण्डकीसम्बन्धी महत्त्वपूर्ण सूचना उपलब्ध गराउनुहुने संस्कृतिविद्, समाजसेवी विद्वान् आचार्य नारायणप्रसाद तिमल्सिना "मधुप" र समाजसेवी विद्वान् श्री हरिकृष्ण उपाध्यायप्रति आभार व्यक्त गर्दछु।

पुनश्च ने. सं. वि. सेवा आयोगका लेखा अधिकृत श्री कमल पोखरेल तथा सम्पूर्ण अधिकृत एवं कर्मचारीहरूप्रति सहयोगका लागि हार्दिक धन्यवाद ज्ञापन गर्दै मेरी श्रीमती मीठा ढकालसहित सम्पूर्ण परिवारका सदस्य, घोराहीका आवासधनी श्री हरि पौडेलका सम्पूर्ण परिवारप्रति हार्दिक धन्यवाद ज्ञापन गर्दछु। यसै सन्दर्भमा विभिन्न किसिमबाट सहयोग पुऱ्याउने वाहन चालक श्री विष्णु के.सी., श्री नारायण लामिछाने एवं श्री विष्णु पन्त तथा गृह परिचारिका श्री शोभा के.सी. प्रति धन्यवाद ज्ञापन गर्दछु।

यस ग्रन्थको अभिनव सम्पादनका क्रममा उपयोग गरिएका विभिन्न प्रकाशित ग्रन्थ, अप्रकाशित शोधप्रबन्ध र ती ग्रन्थका लेखक, अनुसन्धाताप्रति हार्दिक कृतज्ञता निवेदन गर्दछु। यस ग्रन्थलाई अझै गरिमामय बनाउने सन्दर्भमा विज्ञ पाठकहरूबाट सकारात्मक सुझाव र परामर्शको अपेक्षा राख्दै भगवती वाग्देवीका चरणारविन्दमा अर्पण गर्दछु।

# प्रकाशकीय

हिमवत्खण्ड पुण्यभूमि, तपोभूमि र देवभूमिका रूपमा संसारमा प्रसिद्ध छ। हामी नेपाली हिमवत्खण्डको मध्यभागमा रहेका छौँ। यो हाम्रा निमित्त गौरवको विषय हो। विश्वमा नेपालको सम्मान बढाउने स्कन्दपुराणअन्तर्गतको एउटा खण्डलाई पनि हिमवत्खण्ड नै भनिएको छ। यसमा हिमालयको मध्यखण्डको वर्णन गरिएकाले यो ग्रन्थ हिमवत्खण्डका नामबाट प्रसिद्ध छ। आदरणीय योगी नरहरिनाथज्यूको सङ्कल्पबाट प्रकाशित भएको यो ग्रन्थ हाल दुर्लभ भइसकेको छ। सम्पादनको जटिलताका कारण हिमवत्खण्को दोस्रो प्रकाशन गर्ने साइत नजुरीरहेको अवस्थामा अनेकौँ शास्त्रीय ग्रन्थहरूका व्याख्याता एवं सम्पादक प्रा.डा. वेणीमाधव ढकालज्यूले हिमवत्खण्डको पुनः सम्पादन एवं अनुवाद गर्ने कार्य गहन अध्यवसायपूर्वक पुरा गर्नुभएकाले यो ग्रन्थ यस रूपमा प्रकाशनमा ल्याउन सम्भव भएको हो। नेपालको ऐतिहासिक सम्दर्भमा बृहत् ज्ञानकोष मानिने गण्डकीमाहात्म्य, नेपालमाहात्म्य एवं पशुपतिपुराण समेत सानुवाद परिशिष्टखण्डमा समावेश गरी प्रकाशित अभिनव सम्पादन र अभिनव नेपाली अनुवादसहितको यो ग्रन्थ नेपालको संस्कृति, धर्म, दर्शन आदिको अनुसन्धानका लागि अनुपम खजाना बनेको छ।

प्रस्तुत हिमवत्खण्डका प्रायः १३ हजार श्लोकहरूमध्ये ६ हजारजति श्लोकहरूको पुनःसंस्कार गर्दा यो ग्रन्थ अरू प्राचीन पुराणहरूसरह सुललित र प्राञ्जल बनेको छ। यसको नेपाली अनुवाद पनि सरल र सारपूर्ण भएको हामीले महसुस गरेका छौँ। हामीले नेपाल राष्ट्रको ऐतिहासिक, भौगोलिक, सांस्कृतिक, सामाजिक र धार्मिक सुन्दर चित्र प्रस्तुत गर्ने र देवतात्मा हिमालयको आधिभौतिक, आधिदैविक र आध्यात्मिक स्वरूपको परिज्ञान गराउने ग्रन्थलाई नेपाली पाठकसामु पस्कन पाएकोमा गौरवानभुति गर्दछौँ।

नेपाल राष्ट्रको इतिहास, भूगोल, संस्कृति, साहित्य, धर्म, दर्शन, कला, हिमाली प्रकृति, तीर्थ, नदी, मन्दिर एवं शिवलिङ्गहरूको वर्णनमा केन्द्रित वेदव्यासको स्कन्दमहापुराणअन्तर्गत नेपालपरक खण्ड हिमवत्खण्ड हामी नेपालीहरूका लागि अमूल्य सम्पदाको रूपमा रहेकाले यसको नेपालपरक अन्य विशिष्ट कृतिहरूका साथ प्रकाशन गर्न पाउँदा हाम्रो प्रकाशन संस्था गौरवान्वित भएको छ। यसबाट नेपालको गौरवमा रमाउने सबै नेपाली पाठकहरूलाई सन्तुष्टि र तृप्ति प्राप्त हुनेछ भन्ने कुरामा हामी विश्वस्त छौँ। पाठकहरूलाई सन्तुष्टि र तृप्ति भएमा हाम्रो संस्था पनि अवश्य नै कृतकृत्य हुनेछ।

यस महत्त्वपूर्ण कृतिको प्रकाशनका लागि शुभकामनासहित स्वीकृति एवं सम्मति प्रदान गर्नुहुने बृहत् आध्यात्मिक परिषद् मृगस्थलीका महासचिव श्री विश्व के.सी. पोखरेलज्यू, योगी नरहरिनाथ ट्रष्ट आध्यात्मिक परिषद्का अध्यक्ष श्री शङ्कर पौडेलज्यू तथा यस ग्रन्थका निमित्त आफ्नो अमूल्य आशीर्वाद प्रदान गर्नुहुने पूज्य गुरुवर स्वामी राधाविहारीशरणज्यूप्रति विनम्रतापूर्वक कृतज्ञता प्रकट गर्दछौँ। यस कृतिका ग्रन्थसम्पादक एवं अनुवादक प्रा.डा. वेणीमाधव ढकालज्यूप्रति हार्दिक कृतज्ञता ज्ञापन गर्दछौँ। यसका लागि आफ्ना महनीय मन्तव्य प्रदान गर्नुहुने प्रा.डा. वासुदेव त्रिपाठीज्यू, प्रा. विद्यानाथ उपाध्यायज्यू, प्रा.डा. जगदीशचन्द्र रेग्मीज्यू एवं प्राज्ञ प्र. दिनेशराज पन्तज्यू लगायत यस ग्रन्थको गौरव बढाउन सहयोग गर्नुहुने सबैप्रति कृतज्ञता प्रकट गर्दछौँ।

आगामी दिनहरूमा पनि संस्कृत वाङ्मयका ग्रन्थरत्नहरू प्रकाशित गर्दै जाने जानकारी गराउँदै पाठकहरूबाट अमूल्य सुझाव र प्रतिक्रियाहरूको अपेक्षा गर्दछौँ। धन्यवाद।

अध्यक्ष
शान्त गौतम
विद्यार्थी पुस्तक भण्डार
भोटाहिटी, काठमाडौँ।

२०७५ विजयादशमी

# विषयसूची

# विद्याशिरोमणि प्रा. डा. वेणीमाधव ढकालको प्रज्ञासाधना र हिमवत्खण्डको अभिनव सम्पादन

श्रीयुत वेणीमाधव ढकाल (प्राध्यापक, विद्यावारिधि) नेपालको संस्कृत वाङ्मयका मूर्धन्य विद्वान्मध्येका हुनुहुन्छ। उहाँ उत्तिकै प्रतिभावान् स्रष्टा तथा त्यसमा पनि वर्तमान समयका उच्चकोटिका एक संस्कृत सुकविसमेत हुनुहुन्छ। उहाँ मातृभाषा नेपालीको मानक नेपाली व्याकरणसँग र कविपरम्परासँग पनि सुपरिचित एवं नेपाली वाङ्मयिक गद्यलेखन शैलीसँग पनि राम्रै अभ्यस्त यशस्वी नेपाली रचनाकारसमेत हुनुहुन्छ भने उहाँको सारस्वत लेखनीबाट नेपाली कविताविधाले पनि उल्लेख्य सिर्जनासम्पदा पाउँदै आएको छ र उहाँ नेपाली भाषाका प्रतिष्ठित कवि हुनुहुन्छ अनि नेपाली शास्त्रीय वाङ्मयिक फाँटका पनि तपसी चिरसाधक गद्यकारसमेत हुनुहुन्छ। त्यसो त लगभग डेढ दशकको अध्ययनकालीन प्रवास र तदुत्तर भारतबसाइका सन्दर्भमा हिन्दी भाषामा नै पनि उहाँको अप्रतिहत गति देखिएकै छ। उहाँसमेत दशजना विद्वान्हरू सम्मिलित भई खप्तडस्वामीको धर्मविज्ञानग्रन्थ (खण्ड १-४) लाई हिन्दी भाषाबाट प्राञ्जल नेपाली भाषामा उत्कृष्ट रूपमा रूपान्तरण गरेर पनि नेपाली भाषाको समकालीन आध्यात्मिक गद्यकारितालाई विशेष समृद्ध तुल्याइएको कुरा पनि स्मरणीय छँदै छ। उहाँले हिन्दीमा रचना गरेका त्रिशक्तिमाता लीलादेवीजी सन्देश (र लीला शान्ति सन्देश २०४९, २०७०) जीवनी गद्यकृति  तथा स्वर्गद्वारी के महाप्रभु नामक गद्यजीवनचरित्र (२०५८) पनि लोकप्रिय रहेका छन्।

नेपाली पण्डित ब्राह्मणकुलको तात्कालिक परम्पराअनुसार अक्षरारम्भ र उपनयनसंस्कारपश्चात् क्रमशः नेपाल र भारतका विभिन्न गुरुकुल र शिक्षासंस्था हुँदै उहाँले दुई दशकभन्दा बढी नै समय संस्कृत विद्याको आर्जनका अथक साधनामा समर्पण गर्नुभएको हो र उहाँ प्रथमतः संस्कृत साहित्य विषयमा आचार्य परीक्षा (२०३०) मा समुत्तीर्ण भई पछि सर्वदर्शन विषयमा पनि आचार्य परीक्षा (२०३५) मा समुत्तीर्ण हुनुभएको छ। विशेष गरी चार दशकभन्दा बढी (२०३०, २०३४-२०६९ साल) को प्राध्यापकीय गुरुभूमिकाका क्रममा नेपालको संस्कृत विश्वविद्यालयको साहित्य विषयको प्राध्यापक (२०५४) र पछि केही समय (२०५८-६०) विभागीय प्रमुख भई संस्कृत विद्याका शास्त्रीय पुस्तान्तरणमा पनि उहाँले विशिष्ट योगदान गर्नुभएको छ। त्यस्तै उक्त विश्वविद्यालयका अनुसन्धान केन्द्रका कार्यकारी निर्देशकसमेत रही उहाँले संस्कृत अनुसन्धानका उत्प्रेरकका रूपमासमेत उल्लेख्य भूमिका खेल्नुभयो।  केही वर्ष यता (२०६९ साल यता) उहाँ नेपाल संस्कृत विश्वविद्यालय सेवा आयोगको अध्यक्ष हुनुहुन्छ।

छात्रजीवनको प्रारम्भकालदेखि नै लेख्ने बानी बसेको जानकारी कवि वेणीमाधव ढकालले आफ्ना प्रथम प्रकाशित ग्रन्थ शैलेशखण्डकाव्य (२०३०) भेटिन्छ। उहाँले आफ्नो छात्रावस्था (२०२० साल) देखि नै क्रमशः संस्कृत र नेपाली भाषामा लेख्ने बानीका बीच खास गरी २०३० यताका सृजनयात्रामा पद्यगद्यका रचनाका साथै तिनका यथावसर प्रकाशनका माध्यमबाट साहित्यिक सृजनका प्रक्रियामार्फत् उत्कृष्टता प्रदान गर्नाका साथै नेपाली पत्रिकाका सम्पादनका साथै पछि पछि संस्कृत पत्रिकाका सम्पादनमा पनि आफ्नो सक्षमता प्रस्तुत गर्नुभएको छ। उहाँद्वारा गरिएका परवर्ती शास्त्रीय संस्कृत वाङ्मयिक अवगाहनपूर्ण अनुसन्धानात्मक ग्रन्थसम्पादन र टीकाकारिता तथा विवेचना एवं समीक्षाका पद्धतिबाट पनि समकालीन नेपाली तथा संस्कृत साहित्यपरम्परा र तिनका विविध विधागत कृति र कृतिकारिताका साथै शास्त्रीय वाङ्मयिक नेपाली गद्यकृतित्व पनि विशेष समृद्ध हुन पुगेको छ।

यस परिप्रेक्ष्यमा उहाँको विद्यावारिधि सन्दर्भ पनि प्रेरक र प्रभावकारी पक्षका रूपमा देखापर्दछ। उहाँले नेपालका लिच्छविकालिक संस्कृत अभिलेखको साहित्यिक अनुशीलन गर्दै विद्यावारिधि स्तरीय अनुसन्धान कार्य सम्पन्न गरी संस्कृतमाध्यमबाट नै शोधप्रबन्ध लेखी २०४९ सालमा विश्वविद्यालयीय विद्यावारिधि उपाधि प्राप्त गर्नुभयो अनि २०५९ सालमा त्यसको प्रकाशन गर्ने क्रममा ती अभिलेखको नेपाली रूपान्तरलगायत नेपाली भाषामै भूमिका र सारांश पनि दिइएको भेटिन्छ। नेपालको लिच्छविकालिक अभिलेखको साहित्यिक अनुशीलनसम्बन्धी उक्त विद्यावारिधि शोधग्रन्थले गर्दा पनि उहाँको उत्तरवर्ती गद्यवाङ्मयिक कृतित्वसमेत शोधोत्प्रेरित भई विशेष समृद्ध हुन पुगेको छ त्यस्तै उहाँले आधुनिक अंग्रेजीप्रधान शिक्षाप्रणाली अन्तर्गत स्नातक तह वा बी.ए. (२०३४) पनि समुत्तीर्ण गरी प्राप्त गरेको नवविषयगत चेतना र दृष्टिकोणबाट पनि निश्चय नै उहाँको संस्कृतविद्यानिष्ठ मेधावितालाई युगसन्दर्भमा विशेष प्रभावी र लोकग्राह्य रूपमा प्रस्तुत गर्न सघाइएकै देखिन्छ।

वास्तवमा वेणीमाधव ढकालज्यूको संस्कृत–नेपाली वाङ्मयिक समष्टि प्राज्ञिक योगदानलाई नेपालका आधुनिक युगका (विशेषतः विगत शताब्दी) का ती आधुनिक संस्कृत विद्वान् र स्रष्टाहरूका गरिमामय परम्पराका परिप्रेक्ष्यमा ग्रहण गरेर नै म उहाँ (प्रा.डा. वेणीमाधव ढकाल) को हालसम्म झन्डै ५५ वर्ष (आधा शताब्दीभन्दा बढी) को अवधिको प्राज्ञिक योगदानको गौरवबोध गर्नु अपेक्षित ठान्दछु जसको रचनामा उत्कृष्ट भूमिका खेल्दै विशेषतः विभिन्न अग्रपुस्ताका सोमनाथ सिग्देल, कुलचन्द्र गौतम, दधिराम मरासिनी, माधवप्रसाद देवकोटा, बदरीनाथ भट्टराई, पूर्णप्रसाद ब्राह्मण, नयराज पन्त, बुद्धिसागर पराजुली आदि तथा प्रा. चूडानाथ भट्टराय, गायत्री गणेश अर्याल, छविलाल पोखरेल, कुलचन्द्र कोइराला, कृष्णप्रसाद घिमिरे, प्रा. गोविन्दप्रसाद भट्टराई, मीनप्रसाद नेपाल, प्रा. खेमराज केशवशरण, डा. टीकाराम पन्थी, डा. स्वामी प्रपन्नाचार्य र भरतराज मन्थलीयप्रभृति तथा वर्तमानयुगीन प्रा. शिवहरि मरहट्टा, प्रा. विद्यानाथ उपाध्याय, डा. विष्णुराज आत्रेय, फणीन्द्रप्रसाद पाण्डेय, डा. ऋषिराम पोखरेल, प्रा.डा. टीकाराम अधिकारी, स्वामी रामानन्द गिरी आदि मनीषीहरूसँगै एक मध्यमणिका रूपमा वेणीमाधव ढकालज्यूसमेत विराजमान हुनुहुन्छ।

संस्कृत गुरुपरम्पराको प्राध्यापकीय र शोधात्मक भगीरथ तप गरी संस्कृत वाङ्मयको नवप्रसारण र प्रवर्धनमा पनि वेणीमाधव ढकालज्यू समेतको गरिमामय देन रहँदै आएको छ। साथै उहाँ समसामयिक सन्दर्भमा नेपाली भाषा, साहित्य र वाङ्मयको समुन्नयनमा पनि उच्च योगदान गरी प्रतिष्ठित स्रष्टा तथा अध्येता व्यक्तित्व हुनुहुन्छ। विद्वान् वेणीमाधव ढकालको नेपाली भाषातर्फको सारस्वत वा प्राज्ञिक प्रसारको एक पाटो उत्कृष्ट नेपाली कवित्व हो भने अर्को तत्सम्बन्धी महत्त्वपूर्ण पाटो चाहिँ विशिष्ट संस्कृत ग्रन्थहरूको नेपाली टीकाग्रन्थका निर्माणका रूपमा पनि नेपाली र संस्कृत जगत्लाई जोड्दै रचनाशील हुनु रहेको पाइन्छ। त्यस्तै सुप्रसिद्ध संस्कृत वाङ्मयिक कृतिका नेपाली भाषामा गरिएका प्राञ्जल र परिशुद्ध गद्यात्मक रूपान्तरण या मूलानुसारी स्तरीय अनुवादका शृङ्खलाद्वारा पनि उहाँद्वारा संस्कृत र नेपाली वाङ्मयका बीच एक प्रकारको महत्त्वपूर्ण प्राज्ञिक भाषिक सेतुको निर्माण जसरी गरिएको छ त्यो पनि उहाँको उल्लेख्य प्राज्ञिक योगदानको एक महनीय पक्ष हुन आएको छ। यी दुबै सन्दर्भमा नेपालका अनेकौं संस्कृत मनीषीहरूले प्राचीन समयदेखि नै साधना गर्दै आएकोमा वर्तमान युगमा पनि त्यो साधनाक्रम चलिरहेको छ भने वेणीमाधवज्यू पनि २०५० सालको दशकको पूर्वापर समयसन्दर्भमा यस प्राज्ञिक दिशातर्फ उन्मुख हुँदै निरन्तर रूपमा जसरी साधनारत रहनु भएको छ त्यो उल्लेख्य छँदै छ।

खास गरी उहाँको टीकापद्धतितर्फको रुचि प्रथमतः संस्कृत वा संस्कृत–नेपाली भाषालाई अवलम्बन तुल्याई अघि बढ्दै क्रमशः संस्कृत भाषाका विशिष्ट ग्रन्थका नेपाली गद्यात्मक रूपान्तर एवं तिनका बारेका शोधपूर्ण बृहत् विवेचनात्मक उपोद्घातहरूका रचनातर्फ प्रवृत्तिशील भइरहेको पाइन्छ। यस सन्दर्भमा विशेष गरी उहाँबाट सम्पन्न संस्कृत काव्य, काव्यशास्त्र, कर्मकाण्ड, धर्मशास्त्र र पौराणिक वाङ्मयक्षेत्रका यी विभिन्न ग्रन्थको संस्कृत–नेपाली टीकारचनाका साथै नेपाली भाषातर्फको रूपान्तरणका साधना विशेष उल्लेखनीय देखिन्छन्– १. काव्यशास्त्र– काव्यदीपिका, संस्कृत नेपाली टीका (२०५७) २. पुराण– गणेशपुराणम्, नेपाली भाषानुवाद (२०६६) ३. काव्य– कार्तवीर्योदयमकरन्द, ८–९ सर्ग, संस्कृत नेपाली टीका (२०६९) ४. कर्मकाण्ड– विवाहपद्धति, नेपाली अनुवाद (२०६९) ५. धर्मशास्त्र– निर्णयसिन्धु, चूडामणि नेपाली टीकानुवाद (२०७१) ६. धर्मशास्त्र– आह्निकसूत्रावलि, लीलावल्लभी नेपाली टीकानुवाद (२०७२) ७. पुराण– श्रीमद्देवीभागवत, दिव्यलक्ष्मीटीका, नेपाली अनुवाद भाग १–२ (२०७२–२०७३) र ८. पुराण– हिमवत्खण्ड, नेपाली अनुवाद (२०७५) प्रस्तुत मन्तव्यसँग सम्बद्ध प्रकाशनोन्मुख ग्रन्थ।

उपर्युक्त विशेष उल्लेख्य आठ टीका तथा अनुवाद ग्रन्थहरूमध्येको पहिलो काव्यशास्त्रीय टीका वेणीमाधवको लामो साहित्यशास्त्रीय प्राध्यापनकौशल र विद्वत्ताबाट उत्प्रेरित रहेको नेपालीकरणतर्फको रुचिको द्योतक रहेको छ भने प्रसिद्ध संस्कृत उपपुराणमध्येको गणेशपुराणम् नामक संस्कृत पद्यबद्ध पौराणिक समाख्यानको विस्तृत प्राज्ञिक भूमिकासहितको नेपाली भाषानुवादका रूपमा प्रस्तुत उपर्युक्त दोस्रो ग्रन्थ भने संस्कृत पौराणिक वाङ्मयको वाचनलगायत गद्यात्मक नेपालीकरणतर्फको नेपाली गुरुपरम्पराको मौखिक र लिखित प्रयासको पूर्वपरम्पराको निरन्तरतातर्फको विद्वान् स्रष्टा वेणीमाधवढकालज्यूको नवप्रबुद्ध प्रवृत्तताको सूचक भई समुपस्थित छ। यसै महनीय परम्परामा उपर्युक्त क्रमशः सातौं ग्रन्थ श्रीमद्देवीभागवत को विद्वत्तापूर्ण दिव्यलक्ष्मीटीकासहितको नेपालीकरण एवं प्रस्तुत मन्तव्यको केन्द्रीय कृतिस्वरूप आठौं विद्वत्तापूर्ण ग्रन्थ हिमवत्खण्डको नेपाली अनुवाद उत्तरोत्तर गतिमय रहेका छन्।

नेपालमै पाण्डुलिपि उपलब्ध भएको महाकवि सुकुतिदन्त पन्तकृत कार्तवीर्योदय संस्कृतमहाकाव्यको आंशिक नेपाली

टीकाकरणको प्रयासस्वरूप उपर्युक्त तेस्रो ग्रन्थ नेपाली भाषाको प्राचीन अभिलेखयुगपछिको संस्कृत वाङ्मयको वैद्यक, ज्यौतिषीय र धर्मशास्त्रीयप्रभृति विभिन्न विषयक्षेत्रका प्रसिद्ध ग्रन्थको नेपालीकरणतर्फ विशेष प्रवृत्त शास्त्रीय वाङ्मयप्रधान पूर्वयुगदेखिको र नेपाली प्राथमिक लिखित साहित्ययुगमा शक्तिवल्लभ अर्याल, उदयानन्द अर्याल, भानुभक्त आचार्यप्रभृतिले समेत हुर्काएको संस्कृतबाट नेपालीतर्फको विद्यासराइको सुदीर्घ प्राज्ञिक अभियानका सरणीमा विद्वान् स्रष्ट्य वेणीमाधव ढकालको पनि सहभागिता र प्रवृत्तताको अर्को उल्लेख्य सूचक हुँदै हो।

त्यस्तै उपर्युक्त चौथो ग्रन्थ विवाहपद्धति नेपाली अनुवादबाट चाहिँ वेणीमाधवज्यू संस्कृत काव्यशास्त्र र काव्यको नेपालीकरणका अतिरिक्त संस्कृत साहित्येतर शास्त्रीय तथा प्रायोगिक वाङ्मयका नेपालीकरणतर्फ प्रवृत्त भएको देखिन्छ र यो संस्कृत नेपाली विद्वान् तथा स्रष्ट्य कुलचन्द्र गौतमकृत विवाहपद्धतिजस्तो कर्मकाण्डीय ग्रन्थको नेपाली अनुवाद वा रूपान्तर वेणीमाधवज्यूको शास्त्रीय प्रायोगिक पक्षतर्फको नवभुकाउको सङ्केतसमेत हुँदै हो। यसै सन्दर्भमा कमलाकर भट्टकृत निर्णयसिन्धुनामक प्रख्यात धर्मशास्त्रीय ग्रन्थको प्राज्ञिक विस्तृत विवेचनात्मक प्रस्तावना आदि सहितको नेपालीकरणस्वरूप उपर्युक्त पाचौँ ग्रन्थ विशेष विद्वत्तापूर्ण र शोधात्मक उन्मेषपूर्ण एक विशिष्ट शास्त्रीय वाङ्मयिक मानक नेपाली गद्यग्रन्थ ठहर्दछ। यहाँ परिशिष्ट अन्तर्गत वेणीमाधवज्यूद्वारा विशेष अध्यवसायपूर्वक दिइएको डेढ हजार जति धर्मशास्त्रीय संस्कृत शब्दको नेपाली अर्थापनको थप महत्त्व छँदै छ र त्यसो त उहाँ फणीन्द्रप्रसाद पाण्डेयकृत संस्कृत–नेपाली बृहत् शब्दकोश (२०५७) का अन्यतम सम्पादनकर्मी तथा कुलचन्द्र गौतमकृत संस्कृत–नेपाली शब्दकोशका सम्पादनसंयोजक पनि रहेको हुँदै हो। यसै मेसोमा उपर्युक्त छैठौँ ग्रन्थ आह्निकसूत्रावलि लीलावल्लभी नेपाली टीकाग्रन्थ पनि उहाँको नेपाली वाग्देवीप्रतिको एक महनीय धर्मशास्त्रीय प्रदान हुँदै हो।

निचोडमा उपर्युक्त यी आठ नेपालीकृत शोधात्मक र विद्वत्तापूर्ण विशिष्ट ग्रन्थहरू संस्कृत–अनुप्राणित नेपाली शास्त्रीय गद्यवाङ्मयका सुरक्षणीय नेपाली निधि हुनाका साथै सम्बद्ध नेपाली टीकाकार र रूपान्तरकार विद्वान् स्रष्ट्य वेणीमाधवज्यूका मातृभाषा तथा राष्ट्रभाषाप्रतिका प्रगाढ अनुरागपूर्ण प्रदान तथा प्राञ्जल र प्राय प्रसादमय शैलीका अनि गहन शास्त्रीय विवेचना र ऊहापोहका क्रममा पनि तीक्ष्ण तथा विनिर्मल अभिव्यक्तिसामर्थ्ययुक्त नेपाली मानक र बौद्धिक गद्यभाषा तथा गद्यशैलीका विशिष्ट प्राप्तिबिन्दु पनि हुन पुगेका छन्।

उपर्युक्त विभिन्न परिप्रेक्ष्यमा नेपाली प्राज्ञिक परिप्रेक्ष्यमा वेणीमाधव ढकालज्यू एकातर्फ आफ्ना जीवनयात्राका पूर्वार्धसृजनवृत्तमा आफ्ना विशिष्ट खण्डकाव्य र महाकाव्यप्रदानमार्फत् स्मरणीय नेपाली कविका रूपमा र अर्कातर्फ जीवनका उत्तरवयका अनुवाद, टीकाकारिता र विशिष्ट प्राज्ञिक शास्त्रीय शोधका वृत्तमा खास गरी संस्कृतमूलक नेपाली कर्मकाण्डीय र धर्मशास्त्रीय तथा पौराणिक शास्त्रीय वाङ्मयका कुशल र प्रभावकारी नव उपस्थापक गद्यकार र शास्त्रकारका रूपमा प्रतिष्ठित हुन पुग्नुभएको छ।

प्रा. डा. वेणीमाधव ढकालको संस्कृतसाहित्य र साहित्यशास्त्रको व्यापक अवगाहन र प्राध्यापनको लामो र सुदीर्घ अभ्यासबाट खारिएको सारस्वत प्रतिभा एकातर्फ संस्कृतसाहित्यका काव्यसृजन र अर्कातर्फ नेपाली भाषाका काव्यरचना हुँदै वि. सं. २०२० को दशकदेखि र विशेषतः उहाँका २०३०–०३१ सालका उल्लेख्य प्रकाशनचेष्ट्य उप्रान्त अद्यावधि गतिशील रहेको छ भने यस आधा शताब्दीभन्दा बढीको सृजनयात्राका क्रममा पुस्तकाकारमा उहाँको नेपाली कवित्व वि. सं. २०३० का दशकका शुरुदेखि नै नेपाली पाठकसमुदायमा प्रकट हुन आएको कुरा स्मरणीय छ। उहाँका कतिपय नेपाली फुटकर कविता विभिन्न छन्दमा भारततर्फबाट नेपाली विद्यार्थीहरूका सामूहिक सत्प्रयासबाट प्रकाशित भएका र यता नेपालको राजधानी काठमाडौँसम्म आइपुगेका सामयिक पत्रपत्रिकाहरू (नेपाली पुकार, सगरमाथा आदि) मा फाट्टफुट्ट मैले पढेको सम्झना छ तापनि प्रथमतः उहाँको २०३० सालको शैलेशखण्डकाव्य र विशेषतः २०३१ सालको जय ज्योतिष्मती मुमा ! काव्यका माध्यमबाट नै उहाँको प्राञ्जल र सुललित तर अलि परिपुष्ट हुन बाँकी तथा विकासशील छन्दोबद्ध एवं मुक्त गद्यकवितालयसमेत मिश्रित प्रयोगशीलताबाट नेपाली खण्डकाव्यरचनाका आख्यानकृश प्रबन्धात्मक स्वरूपबाट अनि विशेष गरी कृतिगत विभिन्न पद्यपङ्क्तिका भावोल्लास र बिम्बचातुरीबाट मेरो पाठकीय ध्यान उहाँका कविताप्रति आकर्षित भएको हो र तिनको विकस्वर माधुर्योन्मेषका सम्झना अद्यापि मेरा मनमा आउने गर्दछन्।

समयक्रममा पछि उहाँका अर्जुन शोककाव्य (२०५६) र प्रबन्धात्मक आयामका दिव्यलक्ष्मी (२०६५) अनि रश्मिप्रभास महाकाव्य (२०६९) पनि मैले रुचिपूर्वक पढेको हुँ। उक्त महाकाव्य रश्मिप्रभासको काठमाडौँमा सम्पन्न भएको लोकार्पण

एवं विमोचन समारोहको म पनि एक साक्षी तथा सहभागी रहेको हुँ। उक्त महाकाव्यग्रन्थ आद्योपान्त एक आवृत्ति पढेका भावकीय अनुभवका आधारमा उहाँको महाकवित्वका बारेमा पनि मैले आफ्नो परिमित धारणा त्यस समारोहमा व्यक्त गरेको थिएँ। मुख्यतः संस्कृतवाणी र वाङ्मयका साधक नेपाली गुरुजनहरूका नेपाली भाषाप्रति पनि विशेष अनुराग राखी साधनाशील विगत एक शताब्दीका नेपाली कविपरम्परामा उहाँको योगदानउपर आपातदृष्टि दिँदै मैले दिव्यलक्ष्मी र रश्मिप्रभासका महाकाव्यकारितासम्म आइपुग्दा उहाँले नेपाली खण्डकाव्य र महाकाव्यका श्रीवृद्धिमा पुऱ्याएको स्मरणीय योगदानका बारेमा पनि सङ्केत गरेको थिएँ। साथै समुच्चा नेपाली कवितापरम्परामा रश्मिप्रभास तथा दिव्यलक्ष्मीको महाकाव्यकारितासम्म आइपुग्दा उहाँ एक स्मरणीय सुकविका रूपमा प्रतिष्ठित हुन पुगेको चर्चासमेत त्यतिखेर मैले गरेको थिएँ। तर, यो रश्मिप्रभासमहाकाव्य कृतिरचना या प्रणयनका समयका दृष्टिले चाहिँ उहाँको प्रथम महाकाव्यरचनाका रूपमा देखापर्छ र दिव्यलक्ष्मीस्मृतिकाव्य उहाँको महाकाव्यधर्मी परवर्ती प्रयोगी काव्यरचना ठहर्दछ।

कवि वेणीमाधव ढकालका परिपाकोन्मुख कवितायात्राका दुई विशिष्ट काव्यप्रदान हुन् रश्मिप्रभासमहाकाव्य (रचना २०३१, प्रकाशन २०६९) र दिव्यलक्ष्मीनामक महाकाव्यधर्मी स्मृतिकाव्य (रचना २०६४ भदौ ८ (कार्तिक २१, प्रकाशन २०६५)। यी दुबै ग्रन्थ कविताविधाका विस्तारित वा बृहत् रूपमा छन् र महाकाव्य नै हुन्। वस्तुतः रश्मिप्रभासमहाकाव्यकै रूपमा प्रस्तुत छ र यो २५ बिसौनीहरूमा सर्गबद्ध भएको र १४४४ वटा छन्दोबद्ध पद्यहरूमा प्रसारित भएको महाकाव्य कृति हो। दिव्यलक्ष्मी चाहिँ मूलतः स्मृतिकाव्य भनिएको र शोक अङ्गी रस हुन पुगेको अनि चार तरङ्ग र ती अन्तर्गतका २१ बिन्दुमा प्रसारित अनि अनुष्टुप्छन्दको (मेरा सरसर्ती पढाइमा २६ अनुष्टुप्हरफ जतिसम्म पनि प्रसारित भएको) बहुपङ्क्तिगत श्लोकप्रवाहलाई पनि एकै श्लोक मानिएको रचना हो। उक्त दिव्यलक्ष्मी महाकाव्यमा अरू छन्द (मन्दाक्रान्ता, इन्द्रवज्रा र उपेन्द्रवज्रामिश्रित रहेको उपजाति आदि) का पद्यलाई चाहिँ चारहरफे (चतुष्पदी) रूपमा नै लिई श्लोकगणना गरिएको छ। यसरी परम्परागत चारहरफे श्लोक गणनामा औसतमा अनुमानतः पुगनपुग दुई हजार जति श्लोकको ठान्न सकिने अनि कुलवर्णनसहित मातृजीवनीपरक र शोकप्रवाही यो दिव्यलक्ष्मीस्मृतिकाव्य महाकाव्यधर्मी प्रयोगशील रचना नै हो भनी भन्नुपर्ने देखिन्छ।

अब कवि वेणीमाधव ढकालका नेपाली-संस्कृत कवितायात्राका प्रमुख प्रकाशित ग्रन्थ रचनाको अलिकति चिनारीसहित स्वल्प आस्वादन पनि गर्ने प्रयासतर्फ लागौँ। यस सन्दर्भमा वेणीमाधव ढकालद्वारा आ ना संस्कृत पृथूदयमहाकाव्यका प्रकाशित प्रारम्भिक तीन सर्ग (सर्ग ३, ऋतम्भरा, ३, ४, २०५५, सर्ग १-२, नारायणप्रसाद खनाल, प्रज्ञाद्योतित संस्कृत मनीषी प्रा.डा. वेणीमाधव ढकाल, पृ. ३५६-३६८, २०७३) मध्येका तृतीय सर्गका ६९-७० श्लोकमा नितान्त मार्मिक आत्मपरिचय जसरी प्रस्तुत गरिएको छ त्यो प्रथमतः हेरौँ।

पुराऽऽ सं संस्कृतच्छात्रोऽधुना संस्कृतशिक्षकः।
कविः संस्कृतभाषायाः संस्कृतस्य गवेषकः॥
मदीयं जीवनं सर्वं संस्कृताय समर्पितम्।
संस्कृतेनैव शोचामि लिखामि संस्कृतेऽनिशम्॥

उक्त दुई संस्कृत पद्यको नेपाली भाव रूपान्तर तल प्रस्तुत छ (वासुदेव त्रिपाठीकृत) -

पहिले संस्कृत छात्र ऐले संस्कृतशिक्षक।
कवि संस्कृत भाषाको संस्कृतैको गवेषक॥
पूर्ण जीवन भो मेरो संस्कृतैमा समर्पित।
म सोच्तछु संस्कृतैमा लेख्छु सतत संस्कृतै॥

यही मुख्यतः वेणीमाधव ढकालको आत्मचिनारी हो भने त्यसलाई पूर्णता दिन मेरा विचारमा अरू यति पनि थप्नुपर्ला-

रहैं संस्कृत वाणीको विद्याको चिरसाधक।
पढैं पढाएँ त्यै खोजैं सोचैं लेखैं निरन्तर॥
त्यै पुण्यस्रोत-उद्भूत नेपाली काव्य, शास्त्र क्यै।
रची चढाएँ नेपाली वाग्देवी-प्रीतिनिम्तिमा॥

अब पूर्वोक्त यी दुवै संस्कृत–नेपाली प्राज्ञिक सन्दर्भमा यहाँ प्रसङ्गतः स्रष्ट्य वेणीमाधव ढकालका संस्कृत र नेपाली दुवै भाषामा रचिएका साहित्यिक रचनाका विशेष प्रदानका बारेमा केही परिचर्चा गरौँ।

किशोरकालीन संस्कृतप्रथमा तह पार हुँदो छात्रावस्थादेखि नै साहित्यसृजनातर्फ रुचिशील वेणीमाधव ढकाल २०२० सालदेखि संस्कृत भाषामा विद्यामहिमा जस्ता फुटकर कविताको रचना गर्दै र क्रमशः नेपाली भाषाका कवितारचनातर्फ पनि प्रवृत्त हुँदै २०२७ सालमा नवयुवावयमा शास्त्रीपरीक्षा उत्तीर्ण हुनेताक भारतको ऋषिकेशको नेपाली छात्रसंघद्वारा सञ्चालित नयाँ पुकार पत्रिकाको प्रधानक सम्पादकसमेत भएको र उहाँको नेपाली कवित्वको पनि अभ्यास र अन्तर्विकासको क्रम बढेको बुझ्न सकिन्छ। तर, अवश्य नै यसबीच र यसपछि समेत २०२०–२९ का दशकमा उहाँका संस्कृत–नेपाली फुटकर रचना र तिनको प्रकाशन तथा प्रकाशित–अप्रकाशित रूप भने अझै अनुपलब्ध र अनुसन्धेय नै छन्। किन्तु उहाँ साहित्याचार्य भई त्यहीँ प्राध्यापनशील रहन थालेका २०३०–३१ सालका बीचमा भने उहाँका नेपाली खण्डकाव्य शैलेश (२०३०) र जय ज्योतिष्मती मुमा ! (२०३१) भने त्यहीँबाट प्रकाशित भएका हुन् र ती मैलै त्यसताकै पाई तिनको आस्वादन पनि गरेको हुँ र ती निश्चय नै चित्ताकर्षक तथा रम्य अनि कवितापथका अन्वेषी तथा पाठकीय ध्यानाकर्षक काव्य थिए– एक नवोदित विशेष प्रतिभाशील र परिपाकोन्मुख २४–२५ वर्षे उर्वर वयका कविका। यसरी उहाँको नेपाली कविता वाग्द्वार दुई उम्दा खण्डकाव्य–कोपिलाका रचना–उल्लासका सरसतामार्फत् खुल्यो भने यी समयुगीन सन्दर्भमा नेपाली खण्डकाव्य यात्राका एक अभिनव पथिकका दुई उल्लेख्य नवडोब पनि थिए।

संस्कृत विषयको साहित्याचार्यसम्मको शिक्षाग्रहणका क्रममा नै त्यसताकाका अन्त्याक्षरी स्पर्धा र कविगोष्ठीका परम्पराबाट समेत प्रेरित भई स्रष्ट्य वेणीमाधव ढकालको सारस्वत प्रतिभाको पनि क्रमिक अभ्युदय हुन पुग्यो– मुख्यतः संस्कृत काव्य वा साहित्यका परम्पराका प्रेरणास्रोतबाट र अंशतः नेपाली साहित्य तथा हिन्दी साहित्यका पनि प्रत्यक्ष, अप्रत्यक्ष उत्प्रेरणाबाट, सुरुमा र खास गरी वि.स. २०३० सम्मका दशकमा। यसो भएर पनि यस ताकसम्म उहाँको साहित्यको सृजनयात्राको प्रथम श्रेय र प्राप्तिचाहिँ संस्कृत भाषामा भन्दा मातृभाषा–राष्ट्रभाषा नेपालीमा नै संस्कृत साहित्य र साहित्यशास्त्रीय व्युत्पत्तिबाट विशेष अनुप्राणित भई विशेष प्रस्फुटित र प्रसारित हुन पुगेको ठान्न सकिन्छ। यसै सन्दर्भमा म उहाँका पुस्तकाकृतिमा प्रकाशित जेठो ग्रन्थ शैलेश (२०३०) र माहिलो ग्रन्थ जय ज्योतिष्मती मुमा ! तर्फ उन्मुख हुनु उपयुक्त ठान्दछु जुन उहाँद्वारा नेपाली भाषामा रचिएका दुई प्रारम्भिक काव्य कृतिमध्ये पर्दछन्। यीमध्ये उहाँका ग्रन्थप्रकाशनमध्येको जेठो शैलेशखण्डकाव्य पाँच सर्गमा मुख्यतः शार्दूलविक्रीडित छन्दका १११ श्लोक र ग्रन्थसमाप्तितिर द्रुतविलम्बित छन्दका आठ श्लोकसमेतद्वारा बुनिएको ११९ श्लोकशृङ्खलाबाट ग्रथित र सर्गबद्ध छ भने यहाँ अन्त्यानुप्रासी नेपाली पद्यरचनाप्रवृत्ति र अन्त्यानुप्रासनिःस्पृह संस्कृत पद्यपरम्पराका बीच उहाँको कवित्व खेल्दो देखापर्दछ र छन्दगत लघुगुरु–अपेक्षा र नेपाली भाषाको मानक वर्णविन्यासका बीचको तनाव पनि कतिपय स्थलमा दृष्टिगोचर हुने गर्दछ कविले छन्द, पदयोजना तथा भावविन्यास अनि सौन्दर्योन्मुखताका बीच प्रिय कविपथ खोजिरहेको परिष्कारापेक्षी र परिपाकापेक्षी कवित्वको महक र चहकका बीच वस्तुयोजनाले र प्रबन्धविधानले गोरेटो क्यै कप्दै संरचनागत सङ्केत गरेको रम्य कवित्वको झलक यहाँ प्राप्य नै छ। यिनै सन्दर्भमा तल पर्वतराज हिमालयका पुराकथा र प्राकृतिक स्वरूप मुख्य वस्तु रहेको यस शैलेशखण्डकाव्यका प्रातिभ दीप्तिमन्त कवित्वले गर्भित केही पङ्क्ति भावकीय आस्वादन र अन्तर्मननका निम्ति उद्धृत छन् –

मेरो भाव छ सौम्य शान्त कविले गाना सुसेलेसरि (सर्ग १– २)
ब्रह्माले शिव सत्य विश्वभरको सौन्दर्यखानी दिए
कन्या विश्वविलक्षणा बनि उमा पर्खिन् विवाहोत्सव (सर्ग ३–२४)
बाँच्नेछौं हिमशैल ! यो जगतमा खद्योत हामीहरू
हाम्रो मृत्यु हओस् परन्तु शिवको यो देश बाँची रहोस् (सर्ग ५–१९)
न रचना शिव सुन्दर सत्य भो
न सपना मनको परिपूर्ण भो (सर्ग ५–३०)

साथै उक्त शैलेशखण्डकाव्यका प्राग्भागमा पाल्पाकै र ऋषिकेशप्रवासी नेपाली विद्वद्द्वय कृष्णहरि अधिकारी (साहित्याचार्य) र रामप्रसाद ज्ञवाली (शास्त्री) को पाठकबन्धुप्रति सम्बोधित संयुक्त भूमिकामा कवि वेणीमाधव ढकालका बारेमा यो महत्त्वपूर्ण जानकारी पनि दिइएको पाइन्छ– "उहाँका अप्रकाशित अनेकौं रचना छन् जस्तै– टुहुरो (महाकाव्य), सीता

(खण्डकाव्य), दक्षिणा (उपन्यास), पद्मिनी (उपन्यास) र अन्य कवितासङ्ग्रह आदि जो निकट भविष्यमा सहृदय सहयोगले अवश्य प्रकाशमा आउने छन् ।" शैलेशका काव्यकार वेणीमाधव ढकाल स्वयंकै पनि मेरो कुरा अन्तर्गत यस्तो अभिव्यक्ति भेटिन्छ– "आजसम्म लेखिएका तर लक्ष्मी र सरस्वतीको पैंचापैंचमा परी भविष्यको धमिलो आश लिएर अँधेरो कुनामा गुप्तवास बसेका रचनाहरूमध्ये शैलेश (खण्डकाव्य) ले घाम देख्न लागेको हुँदा अन्तरात्मा प्रफुल्लित छ।"

कवि वेणीमाधव ढकालको अर्को काव्य अर्को वर्ष (२०३१) मा प्रकाशित भयो– जय ज्योतिष्मती मुमा !, नव्य काव्यका नाउँले। यस ग्रन्थका आवरणको अन्तिम पृष्ठमा लेखकका मुख्य रचना भनी १६ वटा (१३ वटा नेपाली र ३ वटा संस्कृत) ग्रन्थको नाम दिइएको छ भने यहाँ पाँचौं–छैठौं क्रमका शैलेश र जय ज्योतिष्मती मुमा ! दुई नेपाली काव्य प्रकाशित र अरू रचना अप्रकाशित भनी जानकारी पनि दिइएको पाइन्छ। यहाँ उहाँका १४ प्रकाशित हुन बाँकी यी ग्रन्थमध्ये नेपाली दुई महाकाव्य (टुहुरो र ऐना), दुई उपन्यास (दक्षिणा र पद्मिनी), अरू तीन खण्डकाव्य (सीता, कुलो र त्रिशूल), तीन नाटक (अतृप्ति, अन्तरात्माको आवाज र मायाको पुकार) अनि संस्कृत भाषाका दुई खण्डकाव्य (चेतरामचरितम् र मार्गभ्रष्टः) तथा एक उपन्यास (मनस्विनी) उल्लिखित छन्। वास्तवमा अहिलेसम्म पनि यी अप्रकाशित नै छन् र लेखकसँग यिनको पाण्डुलिपि पनि उति सुरक्षित नरहेजस्तो बुझिन्छ र ती अनुसन्धेय छँदै छन्। साथै यी लेखक वेणीमाधव ढकालका नेपाली र संस्कृत साहित्यिक विभिन्न विधागत ग्रन्थ रचनाका अभ्यासक्रमका नेपथ्यभूमि वा जगका आधारभूत डोबका रूपमा पनि निकै महत्त्वपूर्ण छँदै छन्।

उपर्युक्त जय ज्योतिष्मती मुमा ! नवकाव्य सात पाइलामा सर्गबद्ध छ र यहाँ मुख्यतः एक सर्गमा शार्दूलविक्रीडित, दुई सर्गमा अनुष्टुप् दुई सर्गमा मुक्त गद्यकविता लय, एक सर्गमा झ्याउरे र एक सर्गमा स्रग्धरा छन्दको प्रयोग गरिएको छ भने मालिनी, शिखरिणी, सुन्दरीप्रभृति छन्द पनि सर्गान्ततिर थप प्रयुक्त छन्। यहाँ मुक्त गद्यकविता लयमा यदाकदा सांयोगिक रूपमा र अरू वर्णमात्रिक या वार्णिक प्रयुक्तिका छन्दमा भने प्रबल या अप्रबल रूपमै भए पनि प्राय अन्त्यानुप्रासी चासो लिइएकै पाइन्छ। नेपालका ऐतिहासिक र समकालीन सन्दर्भ नै मुख्य अन्तर्वृत्त र वस्तु रहेको अनि प्रकृतिचित्रण तथा देशभक्तिको सञ्चेतना पर्याप्त चलमलाइरहेको र कोषकाव्यनिकट रहँदै प्रयोगधर्मी खण्डकाव्य हुन पुगेको मातृभूमि नेपालप्रति अनुरागपरक र ५० पृष्ठमा प्रसारित अनि ज्योतिष्मती मुमाका बिम्बमय रूपमा नेपाल आमाको वस्तुगत र भावगत शब्दचित्र उतार्नेतर्फ चासो राखिएको यस नव्यकाव्यको काव्यात्मक अभिव्यक्तिसरणी शैलेशखण्डकाव्यका सापेक्षतामा अलि परिमार्जित हुँदै र खारिँदै आएको अनुभूत हुने गर्दछ। यहाँ तल केही कवितापङ्क्ति भावकीय आस्वादन र अन्तर्मनका निम्ति यस नव्यकाव्यबाट टिपेर उद्धृत गरिएका छन् –

आमा देह तिमी, कथा सब तिमी, जो कल्पना यो तिमी
आत्मा हौ कविकी तिमी जगतमा देखिन्छ जे जो तिमी। (पाइलो– १, पृ. ९)
घन्किए कल्पना बाजा बज्ने वीणा मनोहर,
बृहस्पति यहीं जन्मे सोमनाथ बनीकन
कुना र काप्वा वैलाई बस्ने नेपाली प्रतिभा (पाइलो– ४, पृ. ३२)
राप्तीले स्वर्गद्वारी छविसित सुषमा दाङ्का के नदेलिन्
कर्णाली छाति ठोक्लिन् प्रगति सरणिमा भेरिले नाद गर्लिन्। (पाइलो– ५, पृ. ४१)
यहीं जाँतो घुमाइरहेका, कर्मको प्रवाहमा बगिरहेका
र ढेँकीको नादमा अनाहत नादको तत्त्वानुभूति गरी रहेका
नारीहरूलाई शुक्रताराले समयबोध गराई रहेछन् (पाइलो– ७, पृ. ५५)

यसरी यी पङ्क्तिमार्फत् समेत आभासित हुने आदिकवि भानुभक्त आचार्य, सोमनाथ सिग्देल, लेखनाथ पौड्याल, बालकृष्ण सम, लक्ष्मीप्रसाद देवकोटा र माधव घिमिरेप्रभृति यशस्वी नेपाली कविहरूका पूर्वपरम्परा र पितृबिम्बबाट पनि सूक्ष्मतः उत्प्रेरित हुँदै २०३०–०३१ सालबीच भएको साहित्यस्रष्टा वेणीमाधव ढकालको ध्यानाकर्षक सार्वजनिक नेपाली साहित्यप्रवेशका सन्दर्भमा परितुष्टि व्यक्त गर्दै अब यहाँदेखि वर्तमान समयसम्मको उहाँको साहित्यिक सृजनायात्राको आपाततः अवलोकन गर्ने प्रयास गरौं।

अब कविवर वेणीमाधव ढकालका परवर्ती प्रकाशित चार नेपाली काव्यरचनाको परिमित आस्वादन गरौं । यस सन्दर्भमा पन्ध्रवटा बिसौनी या सर्गमा १४४ विविध छन्दोबद्ध पद्यमा प्रसारित एवं समयुगीन सामाजिक द्वन्द्वसञ्चेतना र करुण नारीजीवनको चित्रणकारी रश्मिप्रभासमहाकाव्य (२०५९ सालमा प्रकाशित भए पनि २०३१ सालमा नै रचिएको रचना), अनुष्टुप् छन्दप्रधान र नौ सर्गको अनि विविध छन्दका ३५८ पद्यमा संरचित एवं जीवनीपरक र भक्तिभावप्रधान त्रिशक्तिखण्डकाव्य (रचना २०४५, प्रकाशन नारायणप्रसाद खनाल, प्रज्ञाद्योतित संस्कृत मनीषी प्रा. डा. वेणीमाधव ढकाल, २०७३, पृ. ३१०-३५५) तथा २०२ अनुष्टुप् पद्य रहेको र १८ प्रखण्डमा संरचित अर्जुन शोककाव्य (२०५६) र चार तरङ्ग या भागमा अनि अनेकौं बिन्दुमा विभाजित दिव्यलक्ष्मीस्मृतिकाव्य (वस्तुतः अलि प्रयोगधर्मी र करुण महाकाव्य, २०५६) का बीचबाट यादृच्छिक नमुनाका रूपमा टिपिएका कतिपय मर्मस्पर्शी कवितापङ्क्ति तल परिमित भावकीय आस्वादन र अन्तर्मननका निम्ति उद्धृत गरिएका छन् –

क. रश्मिप्रभासमहाकाव्यबाट उद्धृत –

किन मानवता रुन्छ ? पृथिवी किन काँप्दछिन् (बिसौनी १, १४)
किन संसार यो बन्छ नारीका निम्ति रौरव (बिसौनी १, १४)
रूपको माधुरीजस्तो मोहनी अरू हुन्छ र ? (बिसौनी २, ५४)
वीरले दुःख भन्दैन फोर्छ चट्टान पर्वत (बिसौनी ६, ८)
ढुङ्गा बेस मुढो बेस फिरन्ता जिन्दगी पनि
तर संसारमा नारी हुनु धिक्कार जीवनी (बिसौनी ८, ९२)
अवनितल छ साक्षी गण्डकीतीर साक्षी
सजल नयन नारी तीव्र चीत्कार साक्षी (बिसौनी १५, ९१)
अति चोट परेर ती गइन्
अनि दुःखान्त कथा यहाँ भइन् (बिसौनी १५, ९२)

ख. त्रिशक्तिखण्डकाव्यबाट उद्धृत –

द्यौता बस्छन् थरिथरि जहाँ धन्य हो देवभूमि
नेपालीको प्रियतम धरा धन्य नेपाल भूमि (सर्ग १, १)
हामी रूप र नामका महलमा हुर्की बढेका जन
त्यो सच्चिद्घन सौख्यको मधुरता चाखौं कसोरी भन (सर्ग ३, २२)
भुवन स्वप्न हो भास रूप हो
हुन त वास हो रङ्ग भूपको (सर्ग ४, २०)
नेपाल कहिल्यै दास भएन यस विश्वमा
हिमालझैं सधैं टल्क्यो स्वतन्त्र राष्ट्र रूपमा (सर्ग ७, ३५)
आमाको वस्तु यो प्यारो आमामा म चढाउँछु (सर्ग ९, ११०)

ग. अर्जुनशोककाव्यबाट उद्धृत –

सम्झना मात्र बाँकी छ अनुहार कहाँ कहाँ ।
आयो मेरो बगैंचामा हुरी निष्ठुर काल त्यो ।
जतनले लगाएको कल्पवृक्ष नयाँ ढल्यो ॥
लुकेर बन्चरो हान्ने आनन्दी परिवारमा ।
हे दैव सामुमा आई पोलिद्यौ सब सिर्जना ॥
संसार नाट्यशालामा खेला जन्म र मृत्युको ।
देखाएर लुकी बस्ने कहाँ छ सूत्रधार त्यो ॥

घ. दिव्यलक्ष्मीमहाकाव्यधर्मी रचनाबाट उद्धृत –

मान्छेले यो नसहिनहुने दैवको दण्ड कस्तो।
जन्मेका मर्दछन् प्राणी मृत्यु नाच्छ यसै गरी। (प्रथम तरङ्ग, प्रथम बिन्दुः २०)
धैर्यका जलले आगो शोकको यो निभाउनुस्॥ (चतुर्थ तरङ्ग, प्रथम बिन्दुः ५)
रीति संसारको कस्तो, प्यारा मान्छे गए पनि।
बाँच्नेले बाँच्नु पर्ने रे जति शोक परे पनि॥ (तृतीय बिन्दुः १८)
यस्ती आमा कहाँ पाऊँ संसार शून्य भो अब।
उनकै कोखमा जन्मूँ जन्म हुन्छ भने अब॥ (चतुर्थ तरङ्ग, चतुर्थ बिन्दुः ५)

अब वेणीमाधव ढकालका प्रकाशित संस्कृत साहित्यरचनाका बारेका अलिकति चर्चा गरूँ कविताविधातर्फ उहाँका हास्यकणिकाः, श्रीलीलास्तवः र हंसस्तवः (२०५८) पद्यावली र स्वर्गद्वारीमहाप्रभोः हुङ्कारः जस्ता संस्कृत गद्यकविता कृति विशेष चर्चित छन्। यी उहाँका उच्च संस्कृत कवित्वसृष्टिका सामर्थ्यका दिग्दर्शक छँदै छन्।

हालै वेणीमाधव ढकालद्वारा २०५२ सालमा रचित जीवनीमूलक र मुख्यतः अनुष्टुप् छन्दबद्ध अमरसिंहथापाचरितम् नामक तीन संवादात्मक सर्गमा बद्ध संस्कृत खण्डकाव्य नेपाली गद्यानुवादसहित प्रकाशनमा आएको छ (नारायणप्रसाद, पूर्ववत्, २९७-३०९) र उहाँको पौराणिक ख्यातवृत्तपरक नवसृजनस्वरूप पृथूदयः संस्कृतमहाकाव्यको एक सर्ग पहिले छापिएकामा अरू थप दुई सर्ग पनि प्रकाशित हुन पुगेका छन् (सर्ग ३, ऋतम्भरा, ३,४ २०५५ मा पूर्वप्रकाशित, सर्ग १-२ को प्रकाशनः नारायण खनाल, पूर्ववत्, पृ. ३५६-३६८)। यसका तृतीय सर्गका कतिपय पद्यहरूमा पाइने चारै पङ्क्तिको अन्त्यानुप्रासीय रमणीयताका साथै सहचारी दुई वा चार पद्यपङ्क्तिका आदि, मध्य र अन्त्य भागका अनि पूर्वार्धगत वा उत्तरार्द्धगत समेत भागको बहुल अनुप्रासविच्छित्ति संस्कृत परम्पराकै निम्ति पनि विशिष्ट कोटिको छ भने यी पूरै तीनवटै सर्गका सन्दर्भमा यो महाकाव्यांश जे जति प्रकाशित छ त्यसबाटै पनि उहाँको उच्च प्रातिभ सारस्वत महाकवित्वशक्तिका साथै उत्कृष्ट काव्यरचनाकौशल सुधीजनसमक्ष अभिव्यञ्जित हुन आउँछ। त्यस्तै उहाँको त्रिशूलप्रहारः नाटक (ऋतम्भरा, वर्ष ३, अङ्क ६, २०५६) धार्मिक पौराणिक प्रतिच्छायामा समकालिक समाजसन्दर्भ तथा युगचेतनाप्रति परिलक्षित र हास्यव्यङ्ग्यगर्भित र प्रभावकारी नवभावभीको नाट्यकृति हो।

वेणीमाधव ढकालज्यूको नेपाली काव्यप्रतिको र नेपाली गद्यवाङ्मयको अलिकति जीवनीपरक र मुख्यतः संस्कृत स्रोतबाट प्रसूत शास्त्रीय गद्यवाङ्मयप्रतिको उच्च योगदानका सम्बन्धमा यति चर्चापछि निष्कर्षमा म भन्दछु– उहाँ पद्यगद्य दुबै धाराका एक सिद्धहस्त स्रष्य हुनुहुन्छ र उहाँ संस्कृतबाट नेपालीतर्फका वाङ्मयिक शास्त्रीय नवगद्ययात्राका पनि एक अग्रणी उन्नायक तथा पुरोधा हुनुहुन्छ।

अब प्रस्तुत मन्तव्यको मूल सन्दर्भस्वरूप तथा ग्रन्थसम्पादक एवं अनुवादक वेणीमाधव ढकालद्वारा अथक सम्पादन र नेपाली अनुवादको विशेष साधनापूर्वक पाठकसमुदायसमक्ष चढाइएको दुई भागको हिमवत्खण्ड नामक ग्रन्थको नवप्रकाशनका बारेमा मेरा केही धारणा यहाँ म अभिव्यक्त गर्दछु।

संस्कृत भाषाको विराट् पुराणसम्पदाअन्तर्गतको अष्टदश या अठाइ पुराणमध्येको स्कन्दपुराणको मेरुखण्डअन्तर्गतको एक खण्ड मानिने हिमवत्खण्डनामक ग्रन्थको नेपालमा रहेका र भेटिएका दुर्लभ पुराना कतिपय पाण्डुलिपि महासाधक योगी नरहरिनाथ (जन्म- वि.सं.१९७२-२०५९ परमसमाधि) का अथक सोधखोजबाट विभिन्न स्रोतबाट प्राप्त भई उहाँबाटै तिनका बीचबाट मूल पाठ ठम्याई २०१३ सालमा श्रद्धापूर्ण जनसहयोग जुटाई प्रथमतः प्रकाशित भएको हो। पर्वतराज हिमालयका केन्द्रवर्ती र मध्यवर्ती भागमा विराजित नेपालका अनेक महान् धार्मिक र सांस्कृतिक क्षेत्र तथा तिनका बाह्य परिवृत्तको समेत पौराणिक वर्णन समाविष्ट भएको र १८८ अध्यायमा फैलिई पुगनपुग अनुष्टुपप्रधान तेह्र हजारजति श्लोकको विस्तार प्राप्त गरेको यस ग्रन्थरत्नको खोज र सम्पादन एवं प्रकाशन गर्ने महामनीषी योगी नरहरिनाथज्यू नेपाली प्रज्ञासाधनाका नवभगीरथावतार नै हुनुहुन्छ। त्यतिखेर हिमवत्खण्डका केही अध्यायको नेपाली अनुवाद योगी नरहरिज्यूका अनुरोधमा पं. सोमनाथ घिमिरे व्यासज्यूबाट सम्पन्न भएको थियो।

२०३० सालमा केही समय भारतमा सरयू संस्कृत विश्वविद्यालयका सञ्चालनका क्रममा योगी नरहरिनाथ खटिरहेका वेला वेणीमाधव ढकालज्यू त्यस संस्थाका साहित्यिविभागका अध्यक्षका रूपमा योगीज्यूका निकट सम्पर्कमा रहनुभएको थियो र योगिराज नरहरिलाई वेणीमाधवज्यू आफ्ना काव्यकलाका गुरु पनि मान्नुहुन्छ। सम्भवतः त्यसै क्रममा प्राप्त सान्निध्यका पुण्यस्मरणले वेणीमाधवज्यू योगिराज नरहरिले थालेको उक्त महिमामय हिमवत्खण्डको पुनः सम्पादन-प्रकाशन अनुष्ठानलाई यतिखेर जनसमक्ष ल्याउन उत्प्रेरित हुनुभयो। २०१३ सालका तात्कालिक प्रकाशनका वखतका छपाइ-अशुद्धिको परिमार्जन

र उपलब्ध मूल पाण्डुलिपिहरूमा आधारित पाठभेद पनि हेर्दै र पूर्वसंस्करणका छपाइलाई छन्द, व्याकरण र अर्थका दृष्टिले सङ्गतिसमेत दिँदै अनि पूर्वसंस्करणको पाठसमेत पादटिप्पणीका माध्यमबाट उल्लेख गर्दै पूरै हिमवत्खण्डको परिशुद्ध स्वरूप यहाँ प्रस्तुत गरिएको छ त्यो प्राज्ञिक दृष्टिले उपलब्धिपूर्ण ठहर्छ। यहाँ २०१३ सालका हिमवत्खण्डका पूर्वप्रकाशनमा योगी नरहरिनाथबाट लेखिएका लेखकीय र प्रकाशकीयलाई पनि योगीज्यूको जीवनीसहित उहाँलाई वाग्देवताको अवतार भनी सम्बोधन गर्दै वेणीमाधवज्यूद्वारा श्रद्धापूर्वक समावेश गरिएको पाइन्छ। त्यस्तै यहाँ विभिन्न पौराणिक र शास्त्रीय उपपत्ति दिई हिमवत्खण्डलाई परवर्ती नेपाली परिशिष्ट खण्ड नभई स्कन्दपुराणको मेरुखण्डकै मूलभागस्वरूप ग्रन्थ सिद्ध गर्नेतर्फको वेणीमाधवज्यूको प्राज्ञिक चासो पनि महत्त्वपूर्ण नै ठहर्छ।

पूरै हिमवत्खण्डको सरल प्राञ्जल नवनेपाली रूपान्तरण पनि सम्पन्न गरी जनसमक्ष नयाँ रूपमा प्रस्तुत गर्न वेणीमाधवज्यू प्रवृत्त हुनुभएको छ र संस्कृत पद्यगद्य वाङ्मयका विभिन्न महान् धार्मिक, सांस्कृतिक ग्रन्थको नेपाली रूपान्तरकार्यमा खर्दै उच्च सफलता प्राप्त गरेका साधकका रूपमा सुप्रतिष्ठित भइसकेका वेणीमाधवज्यूको यो हिमवत्खण्ड नेपाली गद्य रूपान्तर मूलानुसारी र मूलभन्दा बढी आफ्ना तर्फबाट खास केही नथप्दै लक्षित नेपालीभाषी पाठकप्रति पूर्णमैत्रीक पनि छ। यहाँ नेपाली रूपान्तरणका क्रममा मानक नेपाली भाषाको शुद्ध प्रयोग हुनु पनि उल्लेखनीय छँदै छ। यस मूल ग्रन्थका १८८ अध्यायलाई विषयसङ्गत ६ प्रकरणमा वर्गीकृत गरिनु पनि पाठकमैत्रीक सम्पादन नै ठहर्छ। यहाँ ग्रन्थको आमुखस्वरूप तथा शोधसमीक्षापरक एवं विद्वत्तापूर्ण प्रस्तावना खण्ड अन्तर्गत हिमवत्खण्डपुराणको जुन विस्तृत बहुसन्दर्भपरक परिचयात्मक र समीक्षात्मक विस्तृत विवेचना गरिएको छ त्यो पर्याप्त जानकारीप्रद र विद्वत्तापूर्ण पनि छ अनि यसले हिमवत्खण्डपुराणग्रन्थको प्राज्ञिक परिशीलन र मन्थनबाट निःसृत हुने बहुपक्षीय र बहुकोणीय सारभूत पौराणिक विषयबोधको महत्त्वपूर्ण अवसर पनि नेपाली पाठक जगत्लाई विशेष रूपमा उपलब्ध गराएको छ। यहाँ प्रस्तुत ग्रन्थका जम्मै १८८ अध्यायकै जुन नेपालीकृत गद्यात्मक अवतरणिका दिइएको छ त्यो पनि अत्यन्त पाठकोपयोगी छ। तल यस हिमवत्खण्डपुराणका तेस्रो अध्यायका दुई अनुष्टुप्श्लोकका चार पङ्क्ति मूल संस्कृत र वेणीमाधवीय नेपाली रूपान्तरसहित भावकका तुलनात्मक अवलोकनका निम्ति उद्धृत छन् –

कोटिसानुसमायुक्तः कोटिकोट्यन्वितार्चर्चितः।
कोट्यात्मजैः समं पात्रैर्हिमालयो विराजते ॥१३४॥
मेरुप्रतिमसङ्काशो हिमभूषणभूषितः।
यावत्यः प्रोद्भवा नद्यस्तावत्यः कामदा भृशम् ॥१३५॥

*करोडौँ शिखरले युक्त, करोडौँ वंशद्वारा पूजित, करोडौँ व्यक्तिले पूजा गरिएको हिमालय सुशोभित भएको छ। यो पर्वत सुमेरु पर्वतजस्तै छ, हिउँले विभूषित भएको छ। यसबाट जति पनि नदी निस्किएका छन्, ती सबै इच्छाअनुसार फल दिने, पवित्र र सबै प्राणीका पाप हर्ने खालका छन् ॥१३४-१३५॥*

योगी नरहरिनाथज्यूले हिमवत्खण्ड (२०१३) को प्रकाशन गर्दा समावेश गरेको परिशिष्ट सामग्री पनि दिने परम्परालाई परिपूरित र विस्तारितसमेत गर्दै यहाँ परिशिष्ट भाग (क) अन्तर्गत गण्डकीक्षेत्रमाहात्म्य, नेपालमाहात्म्य र पशुपतिक्षेत्रमाहात्म्य पनि भनिने पशुपतिपुराण पूर्ण नेपाली भाषारूपान्तरसहित समेटिएका छन् र यहाँ परिशिष्ट (ख) अन्तर्गत वैश्वानर-ज्वालापुराण, शिव र पशुपति, शक्ति, ज्वाला, बुद्ध, गोरक्ष आदिका स्तुतिस्तोत्र अनि वाग्वती र अरू तीर्थयात्रा र तीर्थको महिमा आदि नेपालका विभिन्न भागमा र नेपाली जगत्मा चलेका अरू नानाविध धार्मिक संस्कृत सामग्रीको पनि त्यस्तो विस्तारित जोहो गरिएको छ जसबाट यो ग्रन्थ अनेक छरिएका नेपाली फुटकर पौराणिक र धार्मिक वाङ्मयको सङ्ग्राहक एक आकरग्रन्थ वा धार्मिक सांस्कृतिक निधिजस्तै पनि हुन पुगेको छ।

नेपालमा संस्कृतविद्याका अनेक महत्त्वपूर्ण ग्रन्थलाई नेपाली भाषामार्फत् नेपाली पाठकसमुदायसमक्ष गहन अथक परिश्रम र प्राज्ञिक सतत लगनधूनसहित सरल रूपमा सुसम्प्रेषित गरी महान् वाङ्मयिक सेतुको सिर्जना गर्ने प्रतिष्ठित रचनाकार वेणीमाधव ढकालज्यूलाई उहाँ महायोगी तथा महागुरु नरहरिनाथका पदचिह्नलाई आफ्ना ढङ्गले पछ्याउँदै हिमवत्खण्डग्रन्थको सघन पाठ सम्पादन र विद्वत्तापूर्ण प्रस्तावनालेखनसँगै पाठकमैत्रीक नेपाली रूपान्तरण कार्य व्यापक महत्त्वका नानापरिशिष्ट सामग्रीको संयोजनसहित प्रस्तुत गर्न सफल भएकामा म हार्दिक एवं गुरुतर बधाइ ज्ञापन गर्छु। साथै विद्यार्थी प्रकाशनले संस्कृत र नेपाली भाषाका बीच धार्मिक, सांस्कृतिक वाङ्मयसेतुका सुदृढीकरणका निम्ति दिँदै आएको प्रकाशकीय ठोस र साहसिक योगदानका निम्ति पनि म हार्दिक साधुवाद व्यक्त गर्दछु।

प्रा. डा. वासुदेव त्रिपाठी
२०७५ भदौ ५, बानेश्वर, काठमाडौँ

# अभिभावनका केही अभिव्यक्ति

श्रद्धेय प्रा. डा. वेणीमाधव ढकाल नेपालमा विद्वत्ताको क्षेत्रमा मूर्धन्यता प्राप्त व्यक्तित्व हो भन्ने कुराको पृष्ठपोषण आवश्यक छैन बरु आवश्यक त उहाँका कृतिहरूमा प्राप्य बौद्धिक क्षमताको सौन्दर्य हामी पाठकहरूले तल्लीन भएर हृदयङ्गम गर्नु नै हो भन्ने मेरो ठम्याइ छ। श्री माधवको व्यक्तित्वमा पवित्र र ओजस्वी शास्त्रज्ञानले अथक परिश्रमको वेणी (सङ्गम) पाएको यो नेपाली नमुना स्तुत्य र गौरवयोग्य सिद्ध छ भन्नेमा कुनै दुविधा छैन।

महनीया नेपाल भूमिलाई स्वावलम्बी अध्यात्ममार्गमा तल्लीन गराउने निम्ति गरिएका अनेका स्तुत्य प्रयासमध्ये एक हिमवत्खण्डको प्रादुर्भावसित मुख्य रूपले सम्बद्ध यस वृद्धाकार ग्रन्थलाई समाजसामु ल्याउन श्री माधवज्यूले राती-दिनका समयावयवहरू खर्च गर्नुभएको छ र ज्यानको पर्वाहा पनि नराख्नुभएको बुझेको छु नत्र आफ्नो पदीय दायित्व पूरा गर्दागर्दै मात्र ६ वर्षभित्र (२०६८-२०७५ लाग्दो) निष्कलङ्क यत्रो ग्रन्थले आकार पाएको हुनु सम्भव थिएन।

त्यसो त यस ग्रन्थका अक्षर-अक्षर, शब्द-शब्दमा माधवको अन्तरात्माले स्निग्धता पुऱ्याएको छ तर प्रस्तावनाका १०२ पेज र मुग्ध र विस्मयकारी प्रतिभाले पूर्णाभिषेक पुऱ्याएको अनुभव सबै पाठकहरूले गर्न पाउनुहुनेछ। यस प्रस्तावना खण्डमा परेका विषयवस्तुलाई आदरणीय अध्यात्मपाठक महोदयहरूको सुविधा निम्तिको निहुँमा म आफू पनि पुनः पिष्टपेषण गरेर केही भए पनि सुविधा पुऱ्याउन अनुमति माग्दछु। तदनुसार हिमवत्खण्डको शारीरिक र प्राथमिक प्रकाशनका बारेमा टिप्पणी साथै कुनै समय आफू लामै समय श्री नरहरिनाथज्यूको सङ्गतमा परिसकेको कारणबाट प्रभावित भएर प्रस्तुत कामको अभिभारा वहन गरेको भन्ने कथन पनि यतै चर्चित भएकाले यस ग्रन्थप्रणयनको औचित्य पुष्टि गरिएको छ।

बृहत्काय ग्रन्थलाई अनुपात मिल्ने गरी तयार पारिएको १०२ टंकीकृत पृष्ठहरूमा प्रस्तारित 'प्रस्तावना' खण्ड अन्तर्गत १. प्रथम परिच्छेदमा हिमवत्खण्डको परिचयप्रस्तुति साथै पूर्वप्रकाशन विवरण परेको छ (पृ. १-१५), २. द्वितीय परिच्छेदमा हिमवत्खण्डको प्रकरणगत विषयवस्तु अध्यायसार समेत (पृ. १५-३६) प्रस्तुत गरिएको छ भने ३. तृतीय परिच्छेदमा हिमवत्खण्डमा आन्तरिक सौन्दर्य (पृ. ३७-५४) तथा ४. चतुर्थ परिच्छेदमा हिमवत्खण्डका केही मननीय एवं महनीय प्रसङ्ग तथा स्कन्दपुराणको संरचना सम्बन्धमा विद्वत्तापूर्ण आलोचना एवं मन्थन (पृ.५५-१०२) गरेर भव्यता प्रस्तुत भएको छ भने यस ग्रन्थलाई महनीय र उपयोगी बनाउन श्री माधवले लघु आकारका नेपाली पुराणहरू- गण्डकीमाहात्म्य, पशुपतिपुराण, नेपालमाहात्म्य र वैश्वानरपुराण तथा अरू स्तोत्रहरू परिशिष्ट भागमा राख्नुभएको छ। राष्ट्रगुरुतुल्य योगिराज नरहरिनाथको पवित्र सेवा-स्मारकको फेर समातेर गरिएको यस उत्थान उपक्रममा म आफू पनि उहाँबाट उपकृत भएको एक नमुनाले उहाँप्रति नतमस्तकता कृत्यको अवसर पाउँदा अझ घनिष्ठता भएकाहरूले गरेको केही सेवाको सम्झना यहाँ गर्नु यथोचितै छ। तदनुसार मेरा भ्रातातुल्य डा. बाबुराम पोखेलले 'हिमवत्खण्ड' को विश्लेषणबाट 'विद्यावारिधि' उपाधि पाउनुभएको विषय स्मरणीय छ भने 'नइ प्रकाशन काठमाडौंले नेपाल सरकारको सहयोगबाट प्रथम प्रकाशनको ५८ वर्षपछि वि. सं. २०७१ मा नेपाली अनुवाद मात्रको प्रकाशन भएको (पृ. ६७२) र त्यसपछिको क्रममा ६२ वर्षपछि यस ग्रन्थको स्मारक प्रकाशन हुन आएको छ, नेपाली समाजको उपयोगी विषय भएकाले जति आवर्तन भए पनि यो स्वागतयोग्य छ नै।

### नेपाली स्वदेशी पुराणहरूको रचनाक्रममा हिमवत्खण्ड

नेपाली संस्कृति र तिनका आधारहरूबारे व्यवस्थित विमर्श नगरिसकिएको वर्तमान अवस्थामा हाल स्थूल रूपमा प्राप्त केही प्रमाणहरूको आधारमा महत्त्वपूर्ण नेपाली स्वदेशी पुराणहरूको मोटामोटी रचनाकालबारे केही भन्न सकिने अवस्था रहेको छ जस अनुसार पहिलो स्थानमा पशुपतिपुराण रहेको छ भने दोस्रोमा नेपालमाहात्म्य अनि हिमवत्खण्डको रचनाक्रम रहेको बुझ्न सकिएको छ किनभने पशुपतिपुराणको ने. सं. ६२४ (वि. सं. १५६१) को पाण्डुलिपि पाइएको छ[१] भने नेपालमाहात्म्यको ने. सं. ७०३ (वि. सं. १६४०) को पाण्डुलिपि पाइएको छ।[२]

हिमवत्खण्डको बारेमा केही निश्चित भनिहाल्नु पहिले खोतल-खातल गर्दा राष्ट्रिय अभिलेखालयको सङ्ग्रहमा

---

१ D.R. Regmi, **Medieval Nepal**, pt. 11, p. 836

२ ऐजन

हिमवत्खण्डको अवस्था बुझ्नु आवश्यक भयो। यस अनुसार राष्ट्रिय अभिलेखालयमा 'हिमवत्खण्ड' का कति पुराना पाण्डुलिपिहरू छन् र माइक्रोफिल्म कार्यक्रमबाट पनि के कस्ता पाण्डुलिपिहरूबारे बुझ–बुझारथ गर्न सकिन्छ भनी जाँदा 'स्कन्दपुराण' शीर्षक अन्तर्गत हिमवत्खण्डका प्रतिहरू रहेका र तिनमध्ये ने. सं. ८१८ (वि. सं. १७५५) र ८४५ (वि. सं. १७८२) को मिति उल्लिखित दुई पाण्डुलिपिहरू विशेष उल्लेखनीय भेटिएका छन्।[३] उक्त मितिभन्दा पुरानो हिमवत्खण्डको पाण्डुलिपिको थप परिचय पाइसकिएको छ जुन यस प्रकार छ।

हालसम्मको अवस्थामा हिमवत्खण्डको सबैभन्दा पुरानो पाण्डुलिपि प्रति ने. सं. ७९६ (वि. सं. १७३३) को मितिमा सारिएको पाइन्छ। जुन ललितपुरका तत्कालीन राजा श्रीनिवास मल्लले सार्न लाएको देखिएको छ।[४] यो पाण्डुलिपि प्रमाणभन्दा ४१ वर्षअघि वि.सं. १६९२ मितिको पुष्पिका वाक्य रहेको हिमवत्खण्डकै एक अंश 'ईश्वरसहस्रनामस्तोत्र' को पाण्डुलिपि पाइएकोले[५] उक्त मितिभन्दा केही पहिले नै 'हिमवत्खण्ड' ले आकार लिइसकेको मान्नुपर्ने भएको छ।

नेपाली स्वदेशी पुराणहरूको कालक्रमबारे प्रमाणगत यति संक्षिप्त अध्ययन गरिएको छ तर एक अप्रत्याशित सन्दर्भले नेपाली स्वदेशी पुराणहरूको रचनाको आरम्भ वि. सं. १४४९ तिर भइसकेको सङ्केत पाइने पाटन कुम्भेश्वर मन्दिरमा रहेको ने. सं. ५१२ (वि. सं. १४४९) मितिको राजा जयस्थितिमल्लकालीन शिलालेखबाट थाहा पाइन्छ जुनमा "कुम्भतीर्थ" को महिमा बताउन लेखिएका श्लोकहरू नेपालमाहात्म्यमा पनि परेको पाइएकोले[६] उपर्युक्त कल्पना गर्न सकिएको हो। कुनै पुराणग्रन्थ अकस्मात् उद्भव नभई विद्वान्हरूका लेखनीका विभिन्न चरण पार गरेर समाजको हातमा सर्लक्क पुग्न जाने हो भन्ने हामीले बुझ्नु आवश्यक छ। जे होस् नेपाली स्वदेशी पुराणहरूको यस्तो विकासक्रम रोचक छ।

हिमवत्खण्डको वस्तुगत योगदान

नेपाली पुराणसाहित्यका सबै ज्ञात–अज्ञात नमुनाहरूले आफ्नो किसिमबाट जनजीवनलाई कुनै न कुनै रूपले प्रभावित पारेको मान्न गाह्रो पर्दैन भने हिमवत्खण्ड जस्तो अपेक्षाकृत वृद्धाकार ग्रन्थले प्रभाव पारेको पाइनु स्वाभाविक नै छ तर यहाँ हाल यस विषयको संक्षिप्त र समष्टि रूपमा विचारार्थ निम्न ३ शीर्षकहरूका माध्यमबाट तुलनात्मक विचार गरिन्छ–

क) विरूपाक्षको आख्यान

ख) चतुःषष्टि शिवलिङ्ग विवरण

ग) नेमुनि र नेपालका कुरा

तल उक्त तीन उप–शीर्षकहरूको संक्षिप्त तार्किक र तुलनात्मक विचार गरिन्छ।

क) विरूपाक्ष

अति नै पापिष्ठ व्यक्तिका रूपमा 'विरूपाक्ष' लाई ठड्याएर हिमवत्खण्डकारले 'नेमुनि' द्वारा 'नेपाल' का यावत् तीर्थयात्रा गराई पापमुक्त गराएको वर्णन गरेका छन्। तर, त्यही 'विरूपाक्ष' को व्यक्तित्वलाई काठमाडौंका महायानी बौद्धहरूले अर्कैतिर मोडिदिएको विषयबारे तल विचार गरिन्छ।

हिमवत्खण्डले उभ्याएको विरूपाक्षको व्यक्तित्वलाई काठमाडौं उपत्यकाक्षेत्रका महायानी बौद्धहरूले पनि आफ्नो धारणा वहन गर्न योग्य तत्त्वका रूपमा सकारेको पाइन्छ तर त्यस स्रोतले तिनको सम्पर्क नेमुनिसित नरहेको चर्चा गर्दै विरूपाक्षले आफ्नो अति पापिष्ठ चरित्रलाई कसरी शोधन गर्न सकिन्छ भन्नेबारे शिवसँग सोध्न गएको, शिवले पाप पखाल्न १८२ भारी तामा पगालेर खान आदेश गरे। त्यस्तो आदेशको पालना गर्नु भनेको सोझै मृत्यु हुने भएकोले विरूपाक्ष एक बौद्ध

---

३ यो लेख तयार पार्ना निम्ति मेरा लागि मित्र डा. टी.पी. धमलाद्वारा राष्ट्रिय अभिलेखालयका हाकिम श्री सौभाग्य प्रधानाङ्गको सौजन्यबाट यति सूचना प्राप्त गर्नुभएकाले यति उल्लेख गर्न सकिएको हो।

४ महेशराज पन्त, "श्रीनिवासमल्लसम्बन्धी तात्कालिक अप्रकाशित लेख" *पूर्णिमा*, अङ्क– ४१, पृ.– २७।

५ दिनेशराज पन्त, *पूर्णिमा*, अङ्क– ३२, पृ. २०६ मा प्रस्तुत वक्तव्यः "इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे शिवप्रोक्त ईश्वरसहस्रनामस्तोत्रं सम्पूर्णम्। श्री शार्क १५५७ फाल्गुन वदि १४ गुरौ लिखितं श्रीमदनन्तशर्मणा डम्बरसाहि पाठार्थमिति, जम्मा ८ पत्रको १४६ श्लोकको सो स्तोत्र अभिलेखालयमा वि. १५८ को रूपमा संरक्षित छ।

६ जगदीशचन्द्र रेग्मी, पशुपतिमाहात्म्य, पृ. १८–२०।

भिक्षुकहाँ जाँदा ती भिक्षुले यौट्य माला दिएर कुनै मन्त्र जप गर्न भने र त्यो माला जप गर्दा–गर्दा खिइएपछि पाप काटिने कुरा पनि बताएका थिए र भिक्षुको उपदेशको पालना गर्न शुरुमा केही अलमल भएपछि सो काम पूरा गरेपछि तिनले यौट्य शिवलिङ्गको दर्शन पाएको र आफूलाई ज्यान जाने किसिमको उपाय बताएकोमा रिसाएर आफूले पाए जति सबै शिवलिङ्गलाई भत्काउन लागिपर्दा पछि पशुपतिको लिङ्ग भत्काउन खोज्दा पशुपतिले बुद्धको शरण परेर आफ्नो ज्यान जोगाए, तिनले बुद्ध मुकुट लगाएपछि विरूपाक्षले पशुपतिलिङ्ग भत्काउनतिर नलागेर तिनैको पूजा गरे। यस घटनाको परिणामस्वरूप पशुपतिमन्दिरमा हरेक वर्ष कार्तिक शुक्ल अष्टमीको दिन बुद्धमुकुट पहिर्‍याएर उत्सव मनाएर पूजा गरिन्छ। विरूपाक्षले शिवसँग रिसाएर देखे जति शिवलिङ्ग भत्काएको हुनाले माफ नेपालका सबै शिवलिङ्ग एकातिर ढल्केका हुन्छन् तर विरूपाक्षले पशुपतिलिङ्गको पूजा गरेको हुनाले त्यही मात्र जोगिएको हो भनेर सो स्रोतमा वर्णन गरिएको पाइन्छ।[७]

## चतुःषष्ठि शिवलिङ्ग– शिव तीर्थ

हिमवत्खण्डमा अध्याय ९० औं अध्यायदेखि १५९ औं अध्यायसम्मका ६९ अध्यायहरूमा नेपालको नक्साको करिब आधा भाग ओगट्ने क्षेत्रमा अवस्थित ६४ शिवलिङ्गहरूको[८] परिचय र माहात्म्य बताइएको पाइन्छ। उक्त ६४ शिवलिङ्गहरूको ठूलो मान्यताको विकास भएको पाइन्छ।[९] यस रूपमा पनि हिमवत्खण्डको ठूलो योगदान मान्न सकिन्छ। माफ नेपालको ठूलो क्षेत्रमा बसोबास गर्ने धार्मिक समाजलाई वर्षभरि आइपर्ने सांस्कृतिक पर्वहरू मनाइने केन्द्रका रूपमा चौसट्ठी शिवलिङ्ग–मन्दिरहरूले समाजमा उपयोगिता पाएका छन्।

## नेमुनि र नेपाल

नेपाली स्वदेशी पुराणहरूमा पहिलो देखिएको पशुपति पुराणमा 'ने मुनि' को उल्लेख र तिनको नामबाट देशको नामको नामकरण भएको मानिएको पाइन्छ (अ. २२, श्लोक १) उपर्युक्त धारणा कायमै गरे पनि नेपालमाहात्म्यमा 'नेमि' रूपमा नेमुनिको नाम फेरिएको पाइन्छ तर हिमवत्खण्डमा पशुपतिपुराणकै 'नेमुनि' रूप कायम गरेको पाइन्छ। काठमाडौं उपत्यकाभेकका महायानी बौद्धमार्गी प्रकारको भाषा वंशावलीमा पनि 'नेमुनि' को नामबाट नेपाल नामकरण भएको उल्लेख गरिएको छ।[१०] तर, उक्त धारणाको उल्लेख एक पुराणेतर स्रोतमा पनि पाइएको कुरा महत्त्वपूर्ण छ।

मध्यमल्लकालमा राजा यक्षमल्लको नामोल्लेख भएको चतुरंक महाभारतनाटकको प्रस्तावनाभागमा 'पहिले जुन ने मुनिको नामबाट राम्ररी पालना गरिएको जमीनलाई मुनिहरूले नेपाल यस्तो नामकरण गरिएको नेपालु' भन्ने उल्लेख भएको छ।[११] उक्त नाटकको पाण्डुलिपिमा तिथिमिति लेखिएको छैन तर सो नाटकको मञ्चन गरिएको मिति 'सुमति सिद्धान्तु' को पुष्पिकावाक्यमा नेपाल संवत् ५७३ (वि. सं. १५१०) भनी टिपिएको हुनाले[१२] 'ने मुनि' को उक्त उल्लेख वि.सं. १५१० को हो भन्न सकिने भएको छ, तर नेमुनिको नामबाट देशको नामकरण भएको भन्ने दावी ज्यादै कमजोर तर्क हो किनभने उक्त मितिभन्दा पुराना स्रोतहरूमा 'नेमुनि' फेला पारिँदैनन् जब कि 'नेपालु' नाम विक्रमपूर्व २००–२५० तिरको कौटिल्य अर्थशास्त्रमा उल्लिखित पाइन्छ।

माथिको संक्षिप्त चर्चाबाट निश्चित प्रयोजनका निमित्त 'नेमुनि' को व्यक्तित्व खडा गरेर उपर्युक्त पुराणकारहरूले स्वदेशलाई ऋषिमुनिहरूको आलोकले आलोकित भएको धारणाको प्रवाह गरेर अध्यात्मवादीहरूलाई सान्त्वना दिएको मान्न सकिन्छ।

---

७ माफ नेपालका धेरैजसो शिवलिङ्गहरू एकातिर ढल्केका देखिने विशेषता तुलनीय र उल्लेखनीय छ।

८ पश्चिम १ नम्बर नुवाकोटदेखि पूर्व दुम्जाका कुशेश्वरसम्म।

९ मल्लकालमा पाटन कृष्णमन्दिरका भित्ता र त्यहींको मल्ल राजदरबारका भित्तामा ६४ शिवलिङ्गहरूको परिचयसाथ अङ्कन गरेको पाइन्छ भने पछिको कालमा पशुपतिनाथको मन्दिरको द्वारमा पनि त्यस्तै गरिएको पाइन्छ।

१० D. wright, History of Nepal, p. 72

११ पूर्णिमा, अंक– ३६, पृ. ३०१।

१२ ऐजन, पृ. ३०४।

हिमवत्खण्डको विशेष योगदान

'हिमवत्खण्ड' को विशेषता र लोकप्रियताका बारेमा अलग्गै सोधखोज गर्नु आवश्यक छ तर हाल उपलब्ध केही सन्दर्भहरूबाट पशुपतिनाथको विशेष पूजाको एक कृत्यका रूपमा 'हिमवत्खण्ड' को पाठ-पारायणको पारम्परिक नियमलाई लिन सकिन्छ।

श्री ५ गीर्वाणयुद्ध विक्रम शाहले वि. सं. १८५६ मा आफ्नी माता कान्तवतीले पशुपतिनाथको प्रतिपूर्णिमा विशेष पूजा, महास्नान, महाबलीको सञ्चालन गर्दा पुऱ्याउनुपर्ने विधिको विवरणमा हिमवत्खण्डको पाठ-पारायण ९ जनाले गर्नुपर्ने साथै पशुपतिसहस्रनाम र वाग्वतीसहस्रनामको एकएक जनाले पाठ गर्ने कुरा लेखिएको पाइन्छ।[१३] उक्त विवरणमा आर्को खण्डमा 'हेमंतषंड-कासिखंड पारायन गर्न्या जना १७' को उल्लेख पाइन्छ।[१४] काइते कर्मचारीहरूले 'हिमवत्खण्ड' नामलाई 'हेमन्तखण्ड' रूप परिवर्तन गरिदिएको स्पष्टै छ। यी सन्दर्भहरूबाट पशुपतिनाथ मन्दिरको भण्डारमा उक्त 'हिमवत्खण्ड' का धेरै प्रतिको सङ्कलन भएको अनुमान गर्न सकिन्छ।[१५]

माथि चर्चित पुशपतिनाथको विशेष पूजा हाल कायमै रहेकोमा 'हिमवत्खण्ड'को पारायण कायम छ/छैन बुझ्न सकिएको छैन। श्री ५ गीर्वाणयुद्ध विक्रम शाहले 'हिमवत्खण्ड' आदि पुराण र शास्त्रहरूले काठमाडौं उपत्यकाका धेरै तीर्थका साथै पशुपतिनाथको महत्त्व बताएको थाहा पाएर पशुपतिनाथको ठूलो मान्यता गरेको वर्णन भाषावंशावलीमा पाइन्छ।[१६] आफ्नो यस महान् 'सारस्वत' यज्ञको मण्डपस्थानमा यी हरफको यस लेखन्तेलाई पनि अलिकति आसन स्थान प्रदान गर्नुभएकोमा यस ग्रन्थका कर्ता प्रा.डा. वेणीमाधवज्यूलाई धन्यवाद अर्पण गर्नासाथै यत्रो बृहत् प्रकाशनको भारवहन गर्न समर्थ श्री शान्त गौतममा पनि बधाइ ज्ञापन गर्ने अनुमति माग्दछु।

भवदीय विनीत,
जगदीशचन्द्र रेग्मी

१३ गोविन्द टण्डन, *पशुपति क्षेत्रको सांस्कृतिक अध्ययन*, भाग- २, पृ. ३९८-९९, मूल पाठमा 'हेमन्तषंड' भनिएको।

१४ ऐजन, पृ. ४०२।

१५ डा. गोविन्द टण्डन (पूर्व सदस्य सचिव, पशुपति क्षेत्र विकास कोष) को भनाइमा पशुपति मन्दिरमा एक प्रति हिमवत्खण्ड रहेको छ।

१६ बालचन्द्र शर्मा (सं.), "काठमाडौं उपत्यकाको एक राजवंशावली" *प्राचीन नेपाल*, अङ्क- २७, पृ. १८।

# राष्ट्रवाद झल्किने अद्वितीय ग्रन्थ : हिमवत्खण्ड

नेपालका धर्म, संस्कृति, राजनीति, अर्थनीति, इतिहास आदि अनेकौं महत्त्वपूर्ण पक्षका स्तोत्र भनौं अथवा संवाहक वा परिचायक, जे भने पनि स्कन्दपुराणअन्तगर्तको हिमवत्खण्ड मेरा परम मित्र संस्कृतविद्याशिरोमणि प्रा. डा. वेणीमाधव ढकालले ज्यादै परिश्रमपूर्वक अत्यन्त राम्रो अनुसन्धानपूर्ण भूमिका, सरल र सुबोध भाषामा समग्र ग्रन्थको अनुवाद, ठाउँ ठाउँमा पाठभेद र टिप्पणीसाथ जनसमक्ष प्रस्तुत गर्नुभएको छ। साथै नेपालमाहात्म्य, गण्डकीश्रेत्रमाहात्म्य, श्रीपशुपतिपुराण लगायत विशिष्टमा नेपालको प्रकार्य प्रकट गर्ने ग्रन्थहरूका साथ साथै विविध अन्य प्रकीर्ण सामग्रीहरू समेत परिशिष्टभागमा समाविष्ट गरी प्रस्तुत गर्नुभएको छ। मेरा दृष्टिमा आजसम्म यस्तो आफ्नो राष्ट्र नेपालको राष्ट्रवाद झल्किने राष्ट्रियतापूर्ण सामग्रीले भरिपूर्ण ग्रन्थ नेपालले पाएको छैन जस्तो लाग्छ। यसका लागि मित्र प्रा. डा. ढकाललाई समग्र नेपालले धेरै धेरै कृतज्ञतापूर्वक धन्यवाद प्रदान गर्नुपर्दछ र गर्छ पनि।

यस ग्रन्थमा के छ, ग्रन्थकारको प्रस्तुतिलाई अनुवादक डा. ढकालले कसरी जनसमक्ष ल्याउनुभएको छ, त्यो त ग्रन्थमा नै छ। यो ग्रन्थ जसले पढ्छ उसैले थाहा पाउँछ, लाभ उठाउँछ र उहाँप्रति कृतज्ञ पनि बन्दछ। तर, मलाई यस विषयमा र यस ग्रन्थग्रन्थका सन्दर्भमा नै केही विषयवस्तुमा केही निवेदन गर्न मन लागेको छ। त्यसका निमित्त अनुमति माग्दछु।

वास्तवमा प्रा. डा. ढकालले भन्नुभए अनुसार हिमवत्खण्ड नेपालको प्राच्य अवस्थिति अथवा स्वरूपलाई नै अभिव्यक्त गर्ने विशिष्ट कोशग्रन्थ नै हो, यसमा शङ्का छैन। यो ग्रन्थ पढेर यसका अभिव्यक्ति, प्रस्तुतिलाई बुझेर हृदयङ्गम जसले गर्दछ त्यो भक्त, ज्ञानी, अनुसन्धाता, राष्ट्रभक्त इतिहासकार आदि जो भए पनि त्यसका जिज्ञासाहरू शान्त हुन सक्दछन्। यसले अवश्य सहायता गर्छ र सम्बद्ध विषयका अनुसन्धातालाई यसले केही विशिष्ट सामग्री दिन सक्तछ।

तर विशेषरूपमा मेरो भन्नु के छ भने–

प्रस्तुत हिमवत्खण्डका ७४ देखि ७७ अध्यायसम्म नेपालका पाशुपतक्षेत्रको श्रीपशुपतिको उद्‌भव र उहाँको माहात्म्य यहाँ प्रस्तुत भएको छ। त्यसको आलोचना गर्ने मेरो मनसाय छैन तर दार्शनिक दृष्टिले र तन्त्रमा प्रतिपादित दृष्टिले श्रीपशुपतिको स्वरूप प्रकाशित हुनु पनि यस ग्रन्थको प्रकृतिसित सान्दर्भिक हुन सक्तछ। पशुपति शिव हुन्, शिव परब्रह्मतत्त्व नै हुन्, जसको नाम पनि हुँदैन, रूप पनि। निराकार, निरञ्जन, सत्, चित्, आजन्दस्वरूप शिव कर्ता पनि होइन भोक्ता पनि कर्मले उनलाई स्पर्श पनि गर्न सक्तैन, कर्मको फलका साथ सम्बन्ध उनको नहुनु त स्वतः प्राप्त नै भैगो। उनी त सम्पूर्ण चराचरजगत्‌मा, विश्वब्रह्माण्डमा व्यात छन्। प्रकाशस्वरूप छन् जसलाई परमनीलिम मह भनिन्छ, त्यस्ता अद्‌भुत ज्योतिःरूप हुन शिव।

त्यति हुँदा हुदै पनि परब्रह्म निराकार उनै शिवले विश्वका कल्याणका निमित्त पञ्चकृत्य सम्पादन गर्दछन्– सृष्टि, रक्षण, संहार, लय र अनुग्रह। यसैका निमित्त शिवले आफ्नै मायाले आफ्नै शक्तिले स्वरूप धारण गर्दछन्। पञ्चकृत्य सम्पन्न गर्नका निमित्त शिवले स्वरूप घारण गर्दछन्। पञ्चकृत्य सम्पन्न गर्नका निमित्त शिवले पञ्चब्रह्म, पञ्चवक्त्र, पञ्चमूर्तिका दिव्य स्वरूप धारण गर्दछन्। शिवका ती पञ्चमूर्तिका नामहरू ईशान, तत्पुरुष, अघोर, सद्योजात र वामदेव हुन्। यी पाँच मूर्तिका (तन्त्रानुसार त) पाँचै शक्तिहरू पनि छन् तिनको नाम क्रमशः कार्मेशी, पूर्णेशी, निशेशी, कुब्जेशी र सिद्धेशी हुन्। यिनै पाँच शक्तिहरूले समन्वित भएर पञ्चब्रह्म–पञ्चमूर्ति शिवले पञ्चकृत्यहरूको सम्पादन गर्दछन्। कहीँ कहीँ भने तन्त्रमा सद्योजात आदि माथिका नामहरू यौटै शिवका पाँच अङ्गहरूका नाम हुन् पनि भनिएको छ। तदनुसार ईशा मूर्धा (शिर), तत्पुरुष मुख, अघोर हृदय, वामदेव गुह्य र सद्योजात पाउ भएका यौटै शिवमूर्तिले पञ्चकृत्य गर्ने हुन् र उनकै एकै मात्र शक्ति छन्। ती हुन् महामायी हैमवती उमा, वत्सला स्नेहमयी अत्मपूर्ण स्वरूप हुन् भनिएको छ।

अर्को दृष्टिले विचार गर्दा परब्रह्म परमात्मा शिव किन पशुपतिका नामले उपासित भए, यसको प्रतिपादन पनि तन्त्रशास्त्रहरूमा प्रसिद्धि छ। जसरी यज्ञका निमित्त ल्याइएको पशु डोरीले बाँधिएको हुन्छ, बद्ध हुन्छ त्यसै गरी ब्रह्मदेखि स्थावरसम्मका जीवहरू अज्ञानले बाँधिएका छन् बद्ध छन्। यी सबै स्वन्त्र छैनन्, कर्मका बन्धनमा पनि छन्। यिनैको बन्धनका मुक्तिका निमित्त कल्याणमूर्ति शिवले तन्त्रशास्त्रको अवतरण गरे। जीव अज्ञानले बाँधिएका छन्। अज्ञानको बन्धन ज्ञानले मात्र फुक्न सक्तछ। ज्ञान शास्त्रबाट मात्र पाइन्छ। कलिका उत्तम शास्त्र तन्त्रहरू हुन्। तिनै तन्त्रहरूको अविर्भाव शिवले गरेका हुन्। अज्ञान पशुत्व हो, शिवले त्यही पशुता– अज्ञान हटाउन तन्त्रशास्त्रहरूको अविर्भाव गरेकाले शिवको नामै पशुपति हुन गएको हो। पशुहरूका मालिक ,ईश्वर, पशुपाशविमोचक पशुपति।

त्यो पनि- शिव त यौटै छन् परब्रह्म परमात्मा- अद्वितीय तत्त्व। उनी त्यही अज्ञानरूप पशुतत्त्वबाट जीवलाई मुक्ति प्रदान गर्ने प्रयोजनका निमित्त अफू यौटै भएर पनि पञ्चमूर्ति बने उनै ईशान, तत्पुरुष, अघोर, वामदेव र सद्योजात अफ कालाग्निरुद्र समेत गर्दा त शिव छमूर्तिका छन्। यिनै छ मूर्तिका भएर शिव गुरुभावमा बसे। ज्ञान प्राप्त गर्न उनको उपदेश सुन्न शिष्य चाहियो। स्वयं उमा महामाया पनि कार्मेशी, पूर्णेशी, निशेशी, सिद्धेशी, कुब्जेशी र वज्रेशीका पनि छवटै स्वरूपमा शिष्यभावमा रहिन्। शिवले आ-आफ्ना शक्तिलाई तन्त्रशास्त्रको उपदेश गरे। शिवका मुखबाट निस्केको र उमाले प्राप्त गरेको त्यही ज्ञान गुरूपरम्पराबाट आजसम्म फैलिएर शिवशास्त्रका रूपमा प्रसिद्ध भयो र त्यसैद्वारा साधकले आफ्नो पाशुपतस्वरूप अज्ञान नष्ट गरे, गर्दै आएका छन्। जसले तन्त्रको ज्ञान प्राप्त गर्‍यो त्यो अज्ञान- बन्धतबाट मुक्त भयो। जसले त्यो ज्ञान प्राप्त गरेन वा प्राप्त गर्ने सकेन त्यो जीव बन्धनमै रहिरह्यो। जन्म र मृत्युका भवबन्धनमा परिरह्यो, परिरहिनै रहेको छ।

पशुपति-शब्दमा पनि तीनवटा तत्त्वहरू छन्- पति पशु र पाश। यिनीहरूमध्ये पति ईश्वर हुन् साक्षात् सदाशिव। उनै पशुहरू- जीवहरूका पाशो हट्याउने पशुपति हुन्। उनै संसारमा जति पनि कार्य हुन्छन् तिनीहरूको सम्पादन गर्ने कारण पनि हुन्।

पशुपति सम्पूर्ण तन्त्रशास्त्रका उपदेशक गुरु पनि हुन्। उनै पशुपति सर्वतन्त्रस्वरूप भएकाले स्वेच्छया जगत्को सिर्जना, रक्षा, विनाश, लय र अनुग्रह, यी पञ्चकृत्य गर्दछन्। यसका निमित्त शिवलाई कसैका अधीनमा बस्नु पर्दैन, कसैको निर्देश मान्नु पर्दैन र अरूको वशीभूत हुनु पनि पर्दैन।

पशुका विषयमा त पहिले पनि चर्चा गरि नै सकियो। पशु ब्रह्मदेखि स्थावरसम्मका जीवहरू हुन् जो अज्ञानरूपी पाशोहरूद्वारा बाँधिएका हुन्छन्। अतः यी अस्वतन्त्र छन्। ती सबै कार्य हुन्। तिनकै मुक्तिका निमित्त पनि पशुपति कृपा गर्दछन् र अज्ञारूपी पाशोबाट मुक्त गर्दछन्। पाश त अज्ञान भैगयो- जेले बाँधिएर जीवहरू पशु बनेका छन् र जेबाट पति करुणावश जीवहरूलाई मुक्त गर्ने गर्दछन्।

पतिले पशुका पाशो छुट्याउने पनि यौटा प्रक्रिया छ। पशुले केही कर्म गर्नुपर्दछ। त्यही क्रिया हो योग। त्यसका पनि दुई भेद छन्- क्रिया स्वयं र अर्को क्रियोपरम। जप, मन्त्रण, धारण, स्मरण क्रिया हुन् भने अर्को क्रियोपरम चहिं अतिगति, रुद्रसमीपताको प्राप्ति जहाँ गएर फेरि फर्कनु पर्दैन, जसलाई रुद्रसायुज्य पनि भदछन्। यसका निमित्त पनि केही प्रक्रियाहरू छन्। ती विधि हुन्। त्यसै अन्तर्गत भस्मधारण गर्नु, भस्ममै सुत्नु, अरू सामान्य जनबाट टढा रहनु शिवकै सामीप्यमा रहनु आदि विधि पर्दछन्।

सबैको फल हो- दुःखान्त। समस्त सांसारिक दुःखको अन्त। ऐकान्तिक दुःखनिवृत्ति र आत्यत्तिक दुःखनिवृत्ति- दुःखको अवश्य निराकरण हुनु र फेरि कहिल्यै दुःख न फर्कनु।

जीवहरूको पशुता नष्ट गर्ने तन्त्रमा नै प्रतिपादित अर्को पनि यौटा विद्या छ पाशुपतास्त्रविद्या। यसका साधनाले पशुपति प्रसन्न भएर अत्यन्त शीघ्र जीवहरूको पशुत्वरूप अज्ञान नष्ट गर्छन्, सुखसमृद्धि, लौकिक, पारलौकिक सिद्धि प्रदान गर्दछन् र अन्तमा आफ्नो पद पनि प्रदान गर्दछन्।

पाशुपतास्त्र विद्याका पनि तीन भेद छन्- लघु, मध्य र बृहती। यी मध्ये लघुभन्दा मध्यम र त्यसभन्दा बृहती पाशुपतास्त्र विद्या झन् झन् प्रभावशाली, शक्तिशाली र सुख समृद्धि एवं शिवसायुज्य प्रदान गर्न सक्षम छन्। यिनका प्रयोग र साधनाले देवदेवगण, यक्ष, गन्धर्व, किन्नर, दानवहरूले र ऋषिमुनिहरूका साथै योगीहरूले लाभ उठाए।

यिनै तीन तत्त्व पति, पशु र पाशको विवेचनात्मक प्रतिपादन सिद्धान्त शैवदर्शनमा पनि छ। यसले पनि पशुपतितत्त्वकै दार्शनिक विचार गर्दै सांसारिक बन्ध र शिवाभिव्यक्तिरूप मोक्षका उपपादन गर्दछ।

यसका अतिरिक्त हिमवत्खण्डमा नेपालका चौसट्ठी शिवलिङ्गहरूको विवरण तिनको दर्शन, पूजनको विवरण गरिएको छ। यस विषयमा पनि के हो त शिवलिङ्ग किन शिवलिङ्गको पूजा उपासना चलेको हो भन्ने विषयमा पनि प्रसिद्ध चर्चा गर्नु यहाँ अनुपयुक्त हुनेछैन।

लिङ्ग शब्दको अर्थ पनि ब्रह्म नै हो जसबाट यो विश्वब्रह्माण्ड नामरूपयुक्त भएर प्रकट हुन्छ। अर्थात् जसबाट ब्रह्माण्डको सिर्जना हुन्छ त्यही त लिङ्ग हो।फेरि जसमा गएर सारा विश्वब्रह्माण्ड विलीन हुन्छ अर्थद् समस्त विश्वब्रह्माण्डको प्रभव र प्रलयको स्थान वा तत्त्वविशेष नै लिङ्ग हो। त्यही त ब्रह्म हो। शिवबाटै समस्त विश्वब्रह्माण्डको सिर्जना र संहार हुने हुनाले लिङ्गका रूपमा शिवको उपासना हुने हो। फेरि जलहरीमाथि त्यसैबाट शिवलिङ्ग आविर्भूत हुन्छ। त्यहाँ जलहरी उमाशक्ति विश्वजननी हुन् र शिवलिङ्ग पुरुषशक्ति शिव स्वयं हुन्। त्यसैकारण शिवलिङ्गको पूजा हुने हो। अर्को कुरा शिवलिङ्ग निर्गुण,

निरञ्जन, निराकार, बृहत्तत्त्व हो जसको नाम र रूप दुबै छैन अथवा जति पनि नाम, रूप छन् विश्वब्रह्माण्डको सबै शिवकै हुन्। यो पनि शिवलिङ्गबाटै प्रकाशित हुन्छ।

यस्तै हिमवत्खण्डमै श्री गुह्येश्वरीको पनि ठूलो माहात्म्यका साथ वर्णन आउँछ। हुन त दक्षको यज्ञ-विध्वंसपछि शिवले सतीको शरीर वहन गरी भ्रमण गर्दा नेपालमा सर्वप्रथम गुह्यपतन हुँदा गुह्येश्वरी पीठको प्रकाश भएको वर्णन छ। तर, पीठनिर्णयहरूमा गुह्यपतन भएर गुह्येश्वरीपीठ प्रकाशित भएको वर्णन त्यहाँ नभएर नेपालमा सतीको बायाँ घुँडा पतन भएको महामायी भगवती र कपाली भैरवको उत्पत्ति भएको कुरा आउँछ। अब त्यो पीठ कहाँ छ ? अनुसन्धेय छ। उपर्युक्त गुह्येश्वरी भगवतीचाहिँ उत्तराम्नायकी अधिष्ठात्री श्रीगुह्येश्वरी नै हुन् भन्ने तथ्य इतिहासबाट परम्पराबाट र किंवदन्ती एवं जनजिभ्राबाट पनि प्रमाणित हुन्छ। गुह्येश्वरीको पीठ नेपालमा रहको त देवीभागवतबाट पनि प्रभाणित हुन्छ।

दशमहाविद्याहरूको गणनाक्रममा उत्तराम्नायकी अधिष्ठात्री गुह्यकाली, आदिविद्या, कालीकुलकी महाशक्ति मानिन्छिन्। उसका भैरव छन् गुह्यभैरव। गुह्यकालीका सगुण एवं निर्गुण दुबै स्वरूपहरू छन्। सगुणमा एकमुखदेखि दशहजार मुखसम्मकी गुह्यकालीको उपसना हुन्छ। देव, दानव, मनुष्य सबैले उनको उपसना गरेर सिद्धि प्रापत गरे। गुह्यकालीको निर्गुणस्वरूप बडो महत्त्वपूर्ण छ। उनक परब्रह्मरूपमा महावाक्यद्वारा उपसना गर्ने निर्देश तन्त्रशास्त्रहरूमा पाइन्छ।

गुह्यकालीका त धेरै भेद छन् जसमा बालागुह्यकाली, निर्वाणगुह्यकाली, महानिर्वाण गुह्यकाली, ज्वालागुह्यकाली, कालागुह्यकाली आदि आदि छन् । गुह्यकाली गुह्ययोगीनी, योगेश्वरी, महायोगेश्वरी, महाकाली, काली, महाचण्डी, मुसेश्वरी, सिद्धयोगीनी, चिच्चण्डगुह्यकाली आदि धरै नामहरूबाट गुह्यकालीको उपसना हुन्छ। अतः उनी योगकै मूर्ति, योगकै मार्गबाट उपासना गरिने परब्रह्म परमात्मा नै हुन्, यो सिद्ध हुन्छ। उनका त शाम्भव, महाशाम्भव, निर्वाण, महानिर्वाण, निर्वाणातीत विद्याहरू छन्। उनको उपासनाबाटै परमेश्वरका प्रसादले जन्म र मृत्युको चक्रबाट मुक्त होइन्छ भन्ने प्रसिद्धि तन्त्रग्रन्थहरूमा पाइन्छ।[1] देवो भूत्वा देवं यजेत्, आफू पनि देवता बनेर आत्मस्वरूपा गुह्यकालीको आराधना गर्ने विधान महत्त्वपूर्ण मानिन्छ।

हिमवत्खण्ड पौराणिक ग्रन्थ हो। यो स्कन्दपुराणअन्तर्गत पर्दछ र यसमा के छ, यसको वैशिष्ट्य के हो, यो सम्पूर्ण कुरा भुमिकाभागमा राखी समग्रग्रन्थको सरल नेपाली भाषामा अनुवाद सम्पन्न गरी नेपालमाहात्म्य, ज्वालापुराण, सम्बद्ध स्तोत्रहरू समेत संलग्न गरी यौटा अनौठो अपूर्व ग्रन्थ प्रा् डा. वेणीमाधव ढकालबाट प्रस्तुत भइसकेको छ। समग्ररूपमा यो ग्रन्थ पढ्दा मेरा मूल्याङ्कनमा यो कार्य अभूतपूर्व भएको ठान्छु। यस ग्रन्थले विषेश रूपमा नेपालका धार्मिक, सांस्कृतिक, सामाजिक, आर्थिक अरू पनि महत्त्व, महिमामय वैशिष्ट्य प्रकाशित गरेको छ। हुन त हिमवत्खण्डको प्रकाशन अनुवादसहित पहिले पनि प्रकाशित भएकै हो तैपनि त्यस प्रकाशनमा केही न्यूनताहरू रहन गएका थिए। अब यस प्रकाशनले त्यसको पनि पुर्णता प्राप्त गरेको छ। यो ग्रन्थ सबै दृष्टिकोणले आफैमा परिपूर्ण छ र सग्राह्य छ। यस ग्रन्थले वास्तवमा राष्ट्रको गौरव, स्वाभिमान बढाएको छ, यौटा महनीय आयम खडा गरेको छ भन्ने मेरो मान्यता छ।

मेरा परमप्रिय मित्र प्रा. डा. वेणीमाधव ढकाल, जसलाई म केवल यौटा मित्रमात्र होइन कि त्यसका साथै उहाँमा रहेको शास्त्रीय ज्ञान, उहाँले गर्ने अनुसन्धान, उहाै अभिव्यक्ति, उहाँका कृतिमा रहेको सरलता, कलाकौशल आदि अनेकौं गुणहरूका दृष्टिले अझ विशेष रूपमा उहाँको संस्कृत वाङ्मयभित्रका धार्मिक साहित्यप्रतिको समादर र सबैले यसप्रति सजग भएर अध्ययन गरून्, सबैले बुझून् र आफ्ना धार्मिक कर्तव्यप्रति गौरवान्वित होऊन् भन्ने दृष्टि म आफुभन्दा निकै माथिको उत्कृष्ट मान्दछु।

उहाँलाई भन्नुपर्ने कुराको अति नै छैन। छोटेमा यही भन्छु– प्राध्यापक त हामी अनेक छौ तर सच्चा प्राध्यापकचाहिँ भन्नुपर्दा उह्यू अग्रगण्य हुनुहुन्छ। उहालाई धन्यवाद छ। भविष्यमा पनि यस्ता अपूर्व कृतिहरू उहाँबाट राष्ट्रले दोहन गरिरहन पाओस्। यसका निमित्त परमेश्वरसूग प्रार्थना गर्दै आफ्ना यी शब्दहरूलाई यहीू विश्राम दिन्छु।

– विद्यानाथ उपाध्याय भट्ट

ॐ तत्सत् !

---

१ महाकालसंहिता श्री गह्यकालीको साङ्गोपाङ्ग उपासनापद्धति प्रकाशित गर्ने मूल तन्त्र हो। यसलाई प्रमाण मानी साधना गर्ने क्रम योगीहरूले अपनाएका छन्।

# हिमवत्खण्डप्रति शुभाकाङ्क्षा

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवम् अनूदित हिमवत्खण्ड (अभिनव सम्पादन एवं अनुवादसहित) हाम्रो अगाडि छ। संस्कृत वाङ्मयका विविध पक्षमा प्रा. डा. वेणीमाधव ढकालका ग्रन्थ प्रकाशित भएका छन्। संस्कृत वाङ्मयका विविध क्षेत्रमा प्रा. ढकालज्युको अबाध गति छ भन्ने कुरा सबैलाई थाहै छ। चार परिच्छेदमा तयार गरिएको विस्तृत प्रस्तावना (उपोद्घात), हिमवत् खण्डको सम्पूर्ण भागको मूल र नेपाली अनुवादले यो पुस्तक सुशोभित छ। परिशिष्टखण्डमा गण्डकी क्षेत्रमाहात्म्य, पशुपतिपुराण, नेपालमाहात्म्य, वैश्वानपुराण अनुवादसहित दिइएका छन्। योगी नरहरिनाथद्वारा वि.सं. २०१३ मा प्रकाशित हिमवत्खण्डमा दिइएका सबै सामग्री सम्पादनपूर्वक यहाँ दिइएका छन्।

योगी नरहरिनाथद्वारा प्रकाशित हिमवत्खण्डको पाठ ठीक नलागेको ठाउँमा आफूले बनाएको पाठ मूलमा दिई टिप्पणीमा नरहरिनाथबाट छापिएको पाठ दिएको छ। यसले गर्दा कहाँ कहाँ परिवर्तन गरिएको रहेछ भन्ने स्पष्ट हुन्छ। नरहरिनाथद्वारा प्रकाशित पाठमा मुद्रणको कारणले वा अरू कारणले पनि अशुद्धि हुनसक्छ। राष्ट्रिय अभिलेखालयको इतिहास पुराणको सूचीपत्र हेर्दा त्यहाँ हिमवत्खण्डका धेरै हस्तलिखित रहेको देखिन्छ। स्वयं योगी नरहरीनाथले प्रयोग गरेको हस्तलिखित प्रतिबाट र अन्यत्र रहेका हिमवत्खण्डका प्रतिबाट पनि पाठ शुद्धिमा बढी मद्दत मिल्न सक्थ्यो। जुन ढङ्गले मूलभागको सम्पादन भएको देखिन्छ त्यही ढङ्गअनुसार परिशिष्टमा निहित पाठको सम्पादन भएको देखिँदैन र धेरै ठाउँमा अनुवाद पनि छैन। यस अवस्थामा हस्तलिखित प्रतिबाट पाठनिर्धारण गर्ने काम गरी सबैको अनुवाद राखिएको भए यो सम्पादन बढी उपादेय हुन्थ्यो। भविष्यमा यो काम पनि हुनेछ भन्ने आशा राख्दै यस्तो महत्त्वपूर्ण कामलाई सम्पन्न गरी नेपालको महत्त्वपूर्ण निधि हिमवत्खण्डलाई प्रकाशन गर्न निरन्तर खटिनुभएका विद्वान् प्रा.डा. वेणीमाधव ढकालज्यूमा धन्यवाद अर्पण गर्दछु। यस्तो महत्त्वपूर्ण कार्यको प्रकाशनद्वारा र अरू पनि यस्तै महत्त्वपूर्ण प्रकाशनद्वारा पौरत्स्यवाङ्मयको उन्नयनमा महत्त्वपूर्ण योगदान दिने विद्यार्थी पुस्तक भण्डार परिवारलाई धन्यवाद ज्ञापन गर्दै आफ्नो कलम यहीँ बिसाउँछु।

– दिनेशराज पन्त

२०७५/०३/०७

# हिमवत्खण्डको नवीनतम संस्करण र यसको आवश्यकता

क्रियाशील व्यक्तित्व प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित, संशोधित, अनूदित हिमवत्खण्ड नेपाललाई एक पुण्यभूमि, तीर्थभूमि, तपोभूमि र कर्मभूमिका रूपमा परिचित गराउने पौराणिक ग्रन्थ हो। यति महत्त्वपूर्ण ग्रन्थको अनुवाद स्वर्गवासी योगी नरहरिनाथले गराएर सर्वप्रथम सम्पादन, प्रकाशन गर्नुभएको थियो तर त्यो ग्रन्थ हतारमा प्रकाशन गर्दा शुद्ध एवं परिष्कृत संस्करण बन्न सकेको थिएन। यतिबेला पौराणिक वाङ्मयका जीर्णोद्धारक एवं पुनर्व्याख्याता, अनुसन्धाता, अनुवादक, ग्रन्थकर्ता, विद्वन्मूर्धन्य व्यक्तित्व प्रा. डा. वेणीमाधव ढकालले यस ग्रन्थलाई आफ्नो शोधपरियोजनाको विषय बनाएर समग्र संस्कृत वाङ्मयजगत् एवं धर्मप्राण अनुसन्धाता, संस्कृतिविद्, पुराणादि शास्त्रका मर्मान्वेषक एवं नेपाल र नेपालीको विशिष्ट पहिचान भएको देख्न चाहने सर्वसाधारण मनीषीहरूमा चिद्विलास–हृदयविकासका लागि यति बृहत् कार्य सम्पन्न गर्नुभएको छ।

हिमवत्खण्डको प्रस्तुत संस्करणमा विशेषतः मन्तव्यसन्दर्भको क्रमपछि यस ग्रन्थका प्रथम सम्पादक वाग्देवतावतार योगी नरहरिनाथज्यूको वैशिष्ट्यप्रकाशन, हिमवत्खण्डको परिचय र रचनासमयादिको प्रस्तुति, अभिनवसम्पादन एवं अनुवादको आवश्यकताको पुष्टि, हिमवत्खण्डको आन्तरिक सौन्दर्यको विश्लेषण, विभिन्न प्रकरणमा समाहित विषयवस्तुबारेको संक्षिप्त जानकारी र परिशिष्टिखण्डका विषयसम्बन्धी सूचनासहितको विस्तृत प्रस्तावनाखण्ड रहेको छ। यसको लगत्तै सम्पादित मूलपाठको उपस्थापन छ। विषयगत साम्यलाई हेरी फरक फरक संख्यामा अध्याय समावेश गरिएका विभिन्न शीर्षकका छब्बिस प्रकरणयुक्त यो ग्रन्थ १८८ अध्यायमा विस्तारित छ।

हिमवत्खण्डको प्रस्तुत सम्पादन पूर्णतया पाठालोचन पद्धतिका आधारमा गरिएको छ। योगीजीको संस्करणमा भएका सम्पूर्ण त्रुटिहरूलाई निराकरण गरी समुचित पाठ ठम्याएर कुन कुन अंशमा पहिले के थियो भन्ने जानकारी पादटिप्पणीमा स्पष्ट खुलाइएको छ। यसबाट प्रथम संस्करण र यस परिमार्जित संस्करणको अध्ययन गर्न सहज भएको छ भने यो पूर्णतया शुद्ध संस्करण तयार भएको छ। प्रथम संस्करणमा संस्कृत खण्ड पहिले नै एकमुष्ठ रूपमा दिएर सबै नेपाली खण्ड पछि एकमुष्ठ रूपमा दिइएकोमा यस संस्करणमा प्रत्येक प्रकरण, अध्याय र श्लोकको श्लोकाङ्कसहित संस्कृत पाठ र त्यसको अनूदित पाठ एकै ठाउँमा अध्ययन गर्ने पाठकीय सुविधा प्राप्त गर्न सकिनेछ। अत्याधुनिक प्रविधियुक्त टाइपिङ–प्रिन्टिङ र त्यसभन्दा अघि डिजाइनिङ–स्पेसिङ लगायत कुशलतापूर्वक गरिएको सुसम्पादन–सुव्यवस्थापन आदिले गर्दा पुस्तकको आकर्षण, गुणगौरव, विषयको सहज प्रतिपादन आदि पक्षहरू यस ग्रन्थलाई गरिमापूर्ण बनाउनमा कारक बनेका छन्।

यत्तिमै स्कन्दपुराण अन्तर्गतको हिमवत्खण्ड र अन्य पुराणबाट पनि नेपाल सम्बन्धी प्रसङ्गका अंशहरू समावेश गरी यस पुराणलाई नेपाल पुराण बनाउने योगीराज नरहरिनाथको अभिलाषा र आशयलाई प्रा. डा. वेणीमाधव ढकालले आफ्ना प्रतिभाका बलले यथासम्भव स्पष्ट, शुद्ध, सुपाठ्य र सुलभ बनाउने जुन प्रयत्न गर्नुभएको छ, मलाई लाग्छ उहाँले समग्र नेपालीलाई नेपाल के हो ? त्यो स्पष्ट बुझाउने–सम्झाउने भरमग्दुर प्रयास गर्नुभएको छ। धार्मिक, आध्यात्मिक र पौराणिक चेतनाका सिद्धहस्त/अभ्यस्त नेपालीले यस परिशोधित–सम्पादित–अनूदित र विशिष्ट भूमिकायुक्त हिमवत्खण्डबाट आकण्ठ कर्णरसायन प्राप्त गरिरहने छन्, यो सबलाई सौभाग्यको सुरभाव हो– ग्रहण गर्न सक्नुपर्छ।

आशा गरौं, जसरी उहाँका टीकाग्रन्थ, पाठ्यपुस्तक, सम्पादित ग्रन्थ, मौलिक काव्य–महाकाव्य, नाटकका साथै अनूदित ग्रन्थहरूमा निर्णयसिन्धु, विवाहपद्धति, आह्निकसूत्रावलि, गणेशपुराण, देवीभागवतमहापुराण आदिले विद्वत्समाजमा गौरवपूर्ण स्थान प्राप्त गरेका छन् सोही स्थान हिमाली क्षेत्रको खास गरी नेपालको पौराणिक ऐतिहासिक दिग्दर्शनपरक यस अनुसन्धानपूर्ण हिमवत्खण्डले प्राप्त गर्नेछ र अनुसन्धानका दृष्टिले नेपालसम्बन्धी पुराणवाङ्मयको अध्ययन गर्नेहरूका लागि यो एक आदर्शग्रन्थ बन्नेछ।

अन्त्यमा, प्रस्तुत हिमवत्खण्ड र यसको नेपाली अनुवाद प्रा. डा. ढकालको सुरभारती सेवा र संस्कृत वाङ्मयभित्र रहेका रहस्यहरूको समुद्घाटन गर्ने सङ्कल्पित परम्पराको अर्को नवीनतम दृष्टान्त हो, थप कडी हो र योगीराज नरहरिनाथप्रतिको ससम्मान श्रद्धाभावको अपूर्व नमुना पनि हो। यसले पौराणिक अनुसन्धानमूलक नवीनतम ग्रन्थको उपहार भारतीभण्डारमा सशक्त रूपमा प्रस्तुत गरेको छ। के आशा गर्न सकिन्छ भने नेपाली बौद्धिक, अनुसन्धित्सु सुधी पाठकजनले यस सङ्ग्रहणीय र पठनीय नवीनतम कृतिको मर्मबोध र मूल्यबोध एवं प्रचार–प्रसार आदि सबै गर्नेछन् भने विद्वत्वर्गले सहर्ष स्वागत गर्नेछ।

२०७४/०४/०५ – प्रा. डा. नारायणप्रसाद खनाल

# हिमवत्खण्डको महत्ता र अभिनव सम्पादन एवं अनुवादको विशेषता

१. उपक्रम

समस्त भारतवर्षको संरक्षक देवतात्मा हिमालय भएको तथ्य पौराणिक वाङ्मयले प्रमाणित गरेको सत्य हो। हिमालयद्वारा अनुप्राणित नभएको कुनै सभ्यता नै छैन। अजस्र स्रोत हो हिमालय नदीहरूको। स्थिरजलप्रवाहमयतिनै नदीका तटीय क्षेत्रमा मानवीय सभ्यताले पालित, पोषित हुँदै विकासका सोपानहरू चढ्दै आएको हो। जहाँ जहाँ हिमालयपालित श्रीसम्पन्न वसुधा छ त्यहाँ गौरवमय इतिहास हुर्किएर उत्कर्षमा पुगेको छ। वेदव्यासरचित स्कन्दपुराणभित्र त्यही महिमामय हिमालयका समृद्धिशाली गाथाले भरिएको एउटा भाग छ– हिमवत्खण्ड। रत्नप्रचुर प्राकृतिक सम्पदालाई समेटेको यस भूखण्डले आफ्नो आश्रयमा रहेका मानवलाई विश्वकै सुसमृद्ध, सुसभ्य अनि सुविकसित बनाउनमा गरिमापूर्ण भूमिका निर्वाह गरेको सत्यताको द्योतनमा पौराणिक इतिहास साक्षी छ।विशेषतः हिमालयपालित नेपाली भूमि र यसभित्रका नदी, तीर्थ, देवस्थल आदिको वर्णन समेटिएको हुनालेनेपाली भूगोल, नेपाली धार्मिक एवं सांस्कृतिक इतिहासको प्रत्यङ्कन, नदीसभ्यताको विकासका चरणहरूको अभिलेखन आदि विषयको मुख्य स्रोत यही हिमवत्खण्ड बन्न पुगेको छ। नेपाली इतिहास र संस्कृति, सभ्यताका अन्वेषक विशिष्ट योगसाधक नेपाल आमाका सपूत राष्ट्रभक्त योगी नरहरिनाथको अथक साधना र तपस्याको फलस्वरूप विभिन्न विद्वान्हरूको सहभागितामा विभिन्न पाण्डुलिपि र अन्य सहयोगी ग्रन्थका आधारमा यस हिमवत्खण्डको प्रथम सम्पादन (२०१३) सम्भव भएको थियो तर पनि परिष्कार र परिमार्जनको गुरुतर कार्य बाँकी नै थियो। पौराणिक वाङ्मयको अनुशीलनमा एकदशकभन्दा बढी समय अनवरत संलग्न रहनुभएका विशिष्ट विद्वान् प्रा. डा. वेणीमाधव ढकालज्यूका सत्प्रयासमा अभिनव सम्पादन र अभिनव अनुवादसहित अहिले त्यही हिमवत्खण्डग्रन्थ नयाँ स्वरूप र नवीन मूल्यवत्ताका साथ प्रकाशनमा आइरहेको छ। यस ग्रन्थको प्रकाशनार्हता सम्पादनको पार्यन्तिक अवधिमा यसको छपाइशुद्धिको निरीक्षण तथा पाठसम्पादन अवलोकनको अवसर प्राप्त भएको र सोही सन्दर्भमा आफ्ना अनुभव प्रस्तुत गरिदिनका लागि गुरुबाट कृपापूर्ण आग्रह भएकाले यहाँ अत्यन्त संक्षेपमा हिवत्खण्डको मूल्यवत्ता र प्रस्तुत अभिनव सम्पादन तथा अनुवादका विशेषताका विषयमा चर्चा गर्नु प्रासङ्गिक हुन आएको हो।

२. हिमवत्खण्डको मूल्यवत्ता

हिमवत्खण्डलाई नेपाली भूमि, हिमालयनिःसृत कौशिकी, गण्डकी आदि अजस्र जलप्रवाहमय नदी, तिनै नदीद्वारा सिञ्चित उर्वर मृत्तिका, तिनैमा अवस्थित अनेकौं देवधाम तथा तीर्थहरू र नेपालका मात्र नभई हिमालयपालित भारत–तिब्बतभूमिका समेत पुण्यक्षेत्रहरूका बारेमा सविस्तार वर्णन गरिएको एउटा प्रामाणिक पौराणिक इतिहासको अभिलेखन भएको विशाल ग्रन्थका रूपमा स्विकारिएको छ। जम्बूद्वीपभित्र पर्ने विशाल एवं सुन्दर सुमेरुखण्डको मध्यभागमा उच्चावच अनेकौं रजतमय शैलश्रेणीले सुशोभित हिमशृङ्खला फैलिएको छ। हिमशृङ्खलाको चारैतफ अर्थात् तिब्बतीय क्षेत्रदेखि बद्रीकेदार लगायतका भूखण्डमा पर्नेनेपालखण्ड/नेपालक्षेत्रका साथै भारतीय हिमशृङ्खलाका पुण्यधाम, हिमचुली, पावन जलप्रवाहयुक्त नदी, पवित्र कुण्ड आदिको वर्णन रहेको ग्रन्थ नै हिमवत्खण्डका नामले लोकविख्यात छ। यस हिमवत्खण्डमा नेपालभित्रका वाराहक्षेत्र, सप्तकोशी, सप्तगण्डकी आदिको उत्पत्तिका रोचक प्रसङ्गसँगै राष्ट्रदेव भगवान् श्रीपशुपतिनाथद्वारा पालित अतिपावनी पाशुपतीपुरीको मनोहर वर्णन छ। हिमालयको देवत्वसिद्धिसँगै विभिन्न दिक्पालहरूको उत्पत्तिका सन्दर्भबाट आरम्भ भई नदीक्षेत्र र त्यसवरपरका पवित्र तीर्थको वर्णनसहित शिवमय भूमि नेपालमण्डलभित्र रहेका विविध तीर्थ तथा चौसट्ठी शिवलिङ्गको महिमाको उपस्थापन यसका महत्त्वपूर्ण विषय हुन्। विषय र सन्दर्भ जे जसरी प्रस्तुत गरिएका भए पनि समष्टिगत रूपमा सर्वत्र मुक्तकण्ठले गरिएको भगवान् शिवको महिमगायन र उनैको केन्द्रीयतामा निर्मित शैवसभ्यताको वर्णन हिमवत्खण्डग्रन्थको सर्वाधिक महनीय पक्ष रहेको छ।

हिमवत्खण्डभित्र समस्त समृद्धिको स्रोत बनेको हिमालय, उसैका नितम्बभागबाट निःसृत अनेकौं नदीहरू, हिमशृङ्खलामा पाइने दुर्लभ औषधीय वनस्पति, तिनैको आश्रयमा बसेका अनेकौं मुनिजनका तपस्या र साधनाले पनपिएको आर्षसभ्यता, सुन्दर वन्यभूमि तथा नेपाली आदिवासीका निवासभूमि र यसभित्रका हिमशिखरहरूको मनोहारी वर्णन, मूर्ति, धातु, स्थापत्य आदि कलाकौशलको प्रतिबिम्बन र पौराणिक कालदेखि अभ्याससमा रहेको नेपाली जनजाति र वर्णाश्रम धर्मका अनुयायीबीचको सौहार्दपूर्ण सह–अस्तित्व आदि अनेक विषयको विवेचन यसको ऐतिहासिक महत्ताको द्योतक हो। नेपालमा रहेका वाराहक्षेत्र, पाशुपतक्षेत्र, नेपालक्षेत्र, हरिहरक्षेत्र, मुक्तिक्षेत्रजस्ता महान् तीर्थको महनीयताको प्रतिपादन तथा सुदूर प्राचीनकालदेखि नै नेपालीहरूले आत्मसात् गरेका व्रत, उपासना, आराधना र सदाचारको निष्ठापूर्ण परिपालनबाट स्थापित हुँदै आएको नेपालको प्रागैतिहासिक सांस्कृतिक पृष्ठभूमिको प्रकाशन यहाँ गरिएको छ।

हिमवत्खण्डमा वर्णन गरिएका पावननदी, हिमाच्छादित शैलश्रेणी, पवित्र तीर्थ एवं कुण्ड आदिको महिमज्ञानबाट नेपालभूमि देवभूमि, तपोभूमि र पुण्यभूमिका रूपमा प्रसिद्ध भएको, नेपालमण्डलको जनजीवन र सामाजिक स्थितिको चित्रण गरिएबाट नेपालमा शासन गर्ने किराती राजचरित्र, तिनको जीवनशैली र लिच्छविराजाहरूको प्रवेशको पूर्वसङ्केत गरिएको, नेपालमा मात्र पाइने विश्वमै दुर्लभ शालग्रामशिलाको विष्णुमयत्व निरूपण गरिएको, सप्तकोशी र सप्तगण्डकीको उद्‌गम, महिमा तथा गोसाईंकुण्ड, देवघाट, वाराहक्षेत्र, चौसट्ठी लिङ्ग, मुक्तिनाथ, देवघाट, मानसरोवरसमेतको चित्रण गरी नेपालको प्राचीन भूगोलको यथार्थस्वरूप प्रकट गरिएको हुनाले यसको गौरव स्वतः सिद्ध छ। यहाँ पशुपतिमन्दिर, गुह्येश्वरीमन्दिरका साथै अनेकौँ मन्दिर एवं मूर्ति, लिङ्ग र दरबार आदिको चित्रण गरी कलासाधनाको उदयकालीन उत्कर्षमाथि प्रकाश पारिएको छ।साथै श्रीकृष्णका छोरा प्रद्युम्नको नेपालकी छोरीका साथ विवाह, श्रीकृष्णको नेपालयात्रा, थुनिएकी वाग्वतीको निष्कासन आदि पुराणप्रतिपादित ऐतिहासिक तथ्यको उद्‌घाटन गरिएको जस्ता विषय समावेश गरी महनीय ऐतिहासिक तथ्यको सत्यापनका आधारहरूको प्रामाणिकता स्थापित गर्ने स्तुत्य प्रयास यसका सम्पादकज्यूबाट भएको छ। यी र यस्तै महत्त्वपूर्ण विषयको जानकारीका लागि अभिनव सम्पादन र अभिनव अनुवादको सारोल्लेखनस्वरूप प्रा. डा. ढकालज्यूले प्रस्तुत गर्नुभएको विस्तृत भूमिका र त्यसभित्र उल्लिखित महनीय प्रसङ्गको अध्ययनबाट पर्याप्त जानकारी प्राप्त गर्न सकिने हुनाले तिनको सम्पूर्णतः पुनरुल्लेखन यहाँ पिष्टपेषण मात्र हुनेछ।

### ३. अभिनव सम्पादन र अनुवादको विशेषता

हिमवत्खण्डको प्रस्तुत संस्करणमा प्रा. डा. वेणीमाधव ढकालज्यूले प्रस्तुत गर्नुभएको विस्तृत भूमिकासहितको प्रस्तावनाखण्डले अभिनव सम्पादन र अभिनव अनुवादको आवश्यकता र मूल्यवत्तामाथि प्रकाश पार्नुका साथै यसभित्रका विषयवस्तुको समष्टिगत स्वरूपको सारोद्धार गरेकै छ। त्यतिमात्र नभई सम्पादित यस ग्रन्थको आद्योपान्त्य निरीक्षण गरिसकेपछि ग्रन्थलाई अविकल बनाउनमा यथामति योगदान गर्ने क्रममा आकलन गरिएका सम्पादन–अनुवादसम्बद्ध कतिपय विशेषताहरूलाई केलाउनु यहाँ सान्दर्भिक हुन आउँछ।

### ३.१ त्रिखण्डी ग्रन्थस्वरूप

प्रा. डा. वेणीमाधव ढकालज्यूले अभिनव सम्पादन र अभिनव अनुवाद गर्नुभएको यस हिमवत्खण्डको वस्तुसंयोजनगत बाह्यसंरचनालाई हेर्दा यसमा मुख्यतः तीन खण्ड देखिन्छन्– भूमिकाखण्ड, मूलपाठखण्ड र परिशिष्टखण्ड। भूमिकाखण्डमा मन्तव्यसन्दर्भ र सम्पादकको आत्मकथन रहेको ग्रन्थविषयक प्रस्तावनाखण्ड गरी दुई मुख्य अंश छन्। मूलपाठमा छवटा प्रकरण छन्। परिशिष्टखण्डमा प्रथम र द्वितीय गरी अवान्तर शीर्षकोपशीर्षक सहितका दुई भाग छन्। यसरी यो ग्रन्थ झट्ट हेर्दैमा त्रिखण्डी संरचनामा प्रस्तुत भएको स्पष्ट देख्न सकिन्छ।

### ३.२ महनीय प्रसङ्गसहितको सारभूत भूमिकाको समावेश

प्रा. डा. वेणीमाधव ढकाल ग्रन्थसम्पादन कला र प्रविधिका विशिष्ट विज्ञ हुनुहुन्छ। साहित्यविषयका प्राध्यापक भएका नाताले साहित्यविषय अन्तर्गत अध्ययन, अध्यापन हुने काव्यशास्त्रीय ग्रन्थ र काव्य, महाकाव्यको सम्पादन, व्याख्यान उहाँको आफ्नै कार्यक्षेत्रगत विशेषज्ञताका लागि पनि अत्यावश्क कार्य थिए। तिनको परिपूर्ति उहाँले काव्यदीपिकाको पाठ्यक्रमोपयोगी अंशको समावेशसहितको टीकालेखन, हरिकेलिमहाकाव्यको विस्तृत भूमिकासहितको सम्पादन तथा कार्तवीर्योदयमहाकाव्यको पाठ्यक्रममा निर्धारित अंशको व्याख्या–विश्लेषणसहितको सम्पादन गरेर पूरा गर्नुभएको छ। त्यसपछिका वर्षमा विश्वविद्यालयको सेवाकालमै गणेशपुराणको नेपाली टीकालेखनका क्रममा पनि त्यस पुराणभित्रका समग्र पक्षको शल्यक्रियाका साथ महनीय प्रसङ्गको उल्लेख गर्दै लेखिएको गुरुतर भूमिका प्रशस्यतर रहेको थियो। सेवानिवृत्तिपछिका वर्षमा प्रकाशनमा आएका विवाहपद्धति, आह्निकसूत्रावली र पछिल्लो चरणमा प्रकाशित श्रीमद्देवीभागवतमा पनि सुविस्तृत एवं महत्त्वपूर्ण भूमिकालेखनको त्यस वैशिष्ट्यले निरन्तरता पाएको यथार्थ हाम्रा सामु छँदै छ। यही निरन्तरतामा प्रस्तुत अभिनव सम्पादन तथा अभिनव अनुवादसहितको हिमवत्खण्ड पनि थपिन आएको छ। मूलतः ग्रन्थको प्रतिपाद्य विषयलाई सम्पूर्ण रूपमा सुबोध्य शैलीमा प्रस्तुत गरी ग्रन्थभित्रका उल्लेख्य खास खास पक्ष र विषयलाई समेट्नु र सामान्यतया ग्रन्थभित्रको रहस्यको संक्षिप्त उद्‌घाटन गर्नु उहाँको अभीष्ट रहेको देखिन्छ। यसै क्रममा यस ग्रन्थमा पनि १०० पृष्ठभन्दा बढीको विस्तार पाएको भूमिकाखण्ड छ जसमा हिमवत्खण्डका समस्त विषय र मूल प्रतिपाद्य वस्तुका बारेमा पर्याप्त सूचना दिने प्रयास भएको छ। त्यसमा के छ भन्नु भन्दा पनि के छैन र भन्ने प्रश्न गर्न मन लाग्छ पाठकलाई। यसप्रकारको भूमिका लेखेर पाठकलाई उपकृत गर्ने ढकालज्यूको शैली अन्य विद्वान्का सापेक्षतामा भिन्न प्रतीत हुन्छ।

### ३.३ अशुद्धि संशोधनसहित मूलपाठको सम्पादन

हिमवत्खण्डको यस नवीन प्रकाशनका सन्दर्भमा अधिक महत्त्व राख्ने विषय यसकोसंशोधनसहितको सम्पूर्ण मूलपाठको सम्पादन हो। सम्पादनको आवश्यकता प्रथम प्रकाशनका बेला नै योगी नरहरिनाथजीले देख्नुभएको थियो र त्यतिबेलाको सम्पादकीयमा त्यसको स्पष्ट उल्लेख पनि गर्नुभएको थियो। प्रा. डा. ढकालज्यूले अध्ययनकालमा श्रद्धेय योगीजीको सान्निध्य पाउनुभएको कारणले एकातिर ढकालज्यूलाई योगीजीको विद्वत्ता र योगदानप्रति श्रद्धावनत हुनु कर्तव्य हो भन्ने बोध भएको हुनुपर्छ भने अर्कातिर नेपाली इतिहास र नेपालभित्रका धर्म, संस्कृति, तीर्थ, नदी, पुण्यक्षेत्र, राजपरम्परा आदिका बारेमा विस्तृत सूचना प्राप्त हुने ग्रन्थ हिमवत्खण्डको महत्ताले पनि उहाँलाई आकृष्ट गरेको सहजै अनुमान लगाउन सकिन्छ। यिनै मुख्य दुई अभिप्रेरक पक्षले उहाँलाई यस गौरवपूर्ण चिरजीवी कर्ममा प्रवृत्त गराएको देखिन्छ।

यसप्रकारको प्रेरणाले दुष्कर कार्यमा लाग्न ढकालज्यूलाई अनवरत उत्साह थपिरह्यो र यो सम्पादन सम्भव भयो। संस्कृत मूलपाठमा प्रकाशनको हतारोका कारण पूर्वसम्पादनकालमा शब्दशुद्धि, वाक्यविन्यास, विशेषण-विशेष्यगत लिङ्गवचनादि अनन्वित शब्दरूपको प्रयोगप्राचुर्य, प्रयुक्त पदहरूको दूरान्वयद्वारा अर्थबोधमा अनुभूत दुरूहता, प्रतिपाद्य वस्तु वा विषयको अस्पष्टता आदि अनेक सम्पादनीय, संशोधनीय पक्षहरू विद्यमान रहिरहेका थिए। पहिलोपटक २०१३ सालमा प्रकाशनमा आएको यस ग्रन्थको संस्कृत भाषानिबद्ध विषयलाई नेपालीमा अनुवाद गरिएको भए पनि तत्कालीन परिवेशको नेपाली भाषाको प्रयोग भएबाट वर्तमानमा नयाँ ढङ्गले प्रचलित भाषाशैलीअनुसार पारदर्शी नेपाली रूपान्तरणको आवश्यकता पनि बोध भइरहेको थियो। प्रमुख यी दुई कारणले पनि हिमवत्खण्डको अभिनव सम्पादन अत्यावश्यक बन्न पुगेको थियो। यही अत्यावश्यकताको पूर्ति गर्ने अभिप्रेरणा डा. ढकालज्यूलाई स्वयं वाङ्मयमूर्तिरूपिणी भगवती वाग्देवीबाट प्राप्त भएकै कारण नेपाल संस्कृत विश्वविद्यालय सेवा आयोग को अध्यक्षका रूपमा आवश्यकीय प्राशासनिक कार्यमा व्यस्त हुनुपर्दाका दिनमा पनि यथावसर समय निकालेर उहाँले यस ग्रन्थको सम्पादन र अनुवादमा आफूलाई नित्य निरन्तर समर्पित गरिरहनुभयो जसको परिणतिस्वरूप अधिकतम सीमासम्म शुद्ध र परिष्कृत भई यो ग्रन्थ प्रकाशनमा आइरहेको छ।

ग्रन्थसम्पादनको मूल धर्म भनेको ग्रन्थको मर्म र मूलपाठमा रहेका शुद्ध पदप्रयोगको यथासम्भव संरक्षण गर्दै अत्यावश्क मात्रामा मात्रै संशोधनीय, केवल परिमार्जनीय अंशको शुद्धीकरण, परिष्कार गर्नु हो। आफुखुसी पदपरिवर्तन गरी स्वैच्छिक अर्थप्रविष्टि दिँदा मूल ग्रन्थकारको मर्ममाथि आघात पर्न जान्छ। संस्कृत व्याकरणको शब्दव्युत्पादन प्रक्रियाका आधारमा सर्वथा शुद्ध शब्दको प्रयोगद्वारा मूलपाठको तात्पर्यसंरक्षण र संशोधन गरी ग्रन्थलाई भाषिक एवं अर्थगत हिसाबले सर्वथा अविकल बनाउने इमानदारीपूर्ण प्रयत्न सम्पादकले गर्नुपर्ने हुन्छ। हिमवत्खण्डको सम्पादनपूर्व डा. ढकालज्यूले सम्पादन गर्नुभएका र टीकाप्रणयन गरी प्रकाशनमा ल्याउनुभएका ग्रन्थले यो शिल्प उहाँमा पहिले नै विद्यमान रहेको तथ्यलाई सत्य साबित गरेकै छन्। यस अर्थमा हिमवत्खण्डको सम्पादन उहाँबाट हुनु प्रशस्य पक्ष हो। हिमवत्खण्डको सम्पादनका क्रममा पनि पूर्वसम्पादित अंशको पाठलाई यथावत् पादटिप्पणीमा राखेर शुद्ध र प्रसङ्गानुकूल अर्थ दिने सन्निकट पदको प्रयोग गरी मूलपाठलाई अविकल बनाउने प्रयास ढकालज्यूबाट भएको देखिन्छ। यस ग्रन्थको प्रथम प्रकाशनका बेला लिङ्ग, पुरुष, वचन, लकार आदिको व्यतिक्रम भएका कारण कतिपय श्लोकहरू सिङ्गै अशुद्ध बनेका पनि रहेछन्। तिनका स्थानमा नयाँ श्लोक तयार गरी सान्दर्भिक अर्थलाई परिपुष्ट पार्ने र भाषिक अशुद्धिनिवारण गर्ने कार्यमा उहाँको इमानदारीपूर्ण सञ्चेतना रहेकै कारण यो ग्रन्थ यस रूपमा परिपूर्ण हुन सकेको देखिन्छ।

### ३.४ सान्दर्भिक वस्तुयुक्त प्रकरणव्यवस्थापन

अभिनव सम्पादनको अर्को उल्लेख्य वैशिष्ट्य विषयगत सन्दर्भ पहिल्याएर प्रकरणहरूको सुव्यवस्थापन गर्नु हो। १८८ अध्यायमा विस्तृत हिमवत्खण्डभित्र समेटिएका विषयहरूलाई तिनको प्रतिपाद्य वस्तुगत समानताका आधरमा प्रायः एकान्वित विषयलाई समावेश गरी तिनको नामकरणसँगै विभिन्न प्रकरणहरूको परिकल्पना यस अभिनव सम्पादनमा गरिएको छ। प्रस्तुत संस्करणमा हिमालय-दिक्पाल-प्रकरण (१-२२ अध्याय), देवासुर-सङ्ग्राम-प्रकरण (२३-३१ अध्याय), कामाख्या-कोशी-गण्डकी-प्रकरण (३२-६२ अध्याय), नेपालमाहात्म्य-प्रकरण (६३-८९ अध्याय), चौसट्ठीलिङ्ग-प्रकरण (९०-१६३ अध्याय) र पाशुपतक्षेत्र वर्णन एवं श्रीकृष्ण-नेपालयात्रा-प्रकरण (१६४-१८८ अध्याय) गरी जम्मा छवटा प्रकरणहरू रहेका छन्।

मूलपाठका उपर्युक्त प्रकरण बाहेक भूमिकाभागका मुख्य दुई खण्ड छन्- मन्तव्यसन्दर्भ र प्रस्तावनाभाग। मन्तव्यसन्दर्भपूर्व शुभकामनाका अभिव्यक्ति र लेखकीय, प्रकाशकीय कथनको क्रम छ। मूलपाठभित्र प्रत्येक प्रकरणको आरम्भमा एउटा पृष्ठमा प्रकरणको नाम र अर्को पृष्ठमा प्रस्तुत प्रकरणभित्रकै कुनै प्रतिनिधि सन्दर्भको पद्यलाई राखेर

त्यसको नेपाली अर्थसहित सम्बद्ध प्रकरणमा वर्णित विषयको सूचना दिने यत्न गरिएको छ। अध्यायको पूर्णता जनाउन आउने पुष्पिकावाक्यमा संस्कृतमूल जे छ त्यही राखेर नेपाली अनुवादको समाप्तिमा प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा अमुक नामक अमुक अध्याय पूर्ण भयो, यस किसिमको वाक्यविन्यासबाट अध्याय पूर्ण भएको सूचना दिइएको छ। प्रकरणको समाप्तिमा भने पराम्बा वाग्वादिनी भगवतीको असीम अनुकम्पाबाट महर्षि वेदव्यासरचित स्कन्दमहापुराणअन्तर्गत हिमवत्खण्डको पोरकनी पाल्पा निवासी पतिव्रताशिरोमणि स्वर्गीय माताश्री दिव्यलक्ष्मी ढकाल र सज्जनमुकुटमणि स्वर्गीय पिताश्री चूडामणि ढकालका कनिष्ठ पुत्र नेपाल संस्कृत विश्वविद्यालय सेवा आयोगका अध्यक्ष प्रा. डा. वेणीमाधव ढकालद्वारा गरिएको अभिनव सम्पादन एवं नरहरिनामक नेपाली भाषानुवादको क्रममा (अमुक) प्रकरण पूरा भयो भन्ने उल्लेख गरिएको छ। यस विरुदावलिले अभिनव सम्पादक/अनुवादक डा. ढकालका बारेमा जानकारी दिएर ग्रन्थलेखनको परम्परित पद्धतिको पनि अनुसरण गरेको पाइन्छ।

३.५ नेपाली अनुवादको भाषिक अद्यावधिकीकरण

कुनै पनि भाषा सदाकाल एकरूप रहिरहन्न। देश, काल, परिस्थिति, भाषान्तरको प्रभाव आदि कारणले भाषा, साहित्यमा सामयिक परिमार्जन, रूपान्तरण, उत्कर्षापकर्ष भइरहन्छ। अत एव समयपरिवर्तनसँगै ग्रन्थको पुनःसम्पादन र भाषिक अद्यावधिकीकरण आवश्यक हुन आउँछ। यस अर्थमा २०१३ सालमा प्रकाशित हिमवत्खण्डमा तत्कालमा प्रचलित नेपाली भाषाको प्रयोग हुनु र वर्तमानमा व्यवहारमा रहेको नेपाली भाषाको स्वरूपमा एकरूपता नहुनु कुनै आश्चर्यको विषय होइन। झन्डै ६२ वर्षको अन्तरालमा नेपाली भाषाले लिएको नवीन स्वरूपका सापेक्षतामा हिमवत्खण्डको नेपाली भाषामा अर्थापन गर्दा भाषिक आधुनिकीकरण अत्यावश्यक नै बनेको थियो जसको परिपूर्ति हाल प्रकाशनमा आउँदै गरेको अभिनव सम्पादन एवं अभिनव अनुवादसहितको यस नयाँ हिमवत्खण्डले गर्नेछ। यसबाट पुरानो शैलीको र ठाउँठाउँमा अपूर्ण नेपाली भाषाका कारण अर्थबोधमा अनुभव हुनसक्ने कठिनाइको निराकरण हुने निश्चित छ।

३.६ प्रकरण र उपशीर्षकसहितका परिशिष्टखण्डको सुव्यवस्थापन

विभिन्न विद्वान्हरूको सहयोगमा योगी नरहरिनाथद्वारा सम्पादित भई प्रथम पटक प्रकाशनमा आएको हिमवत्खण्डको परिशिष्टभागमा रहेका सामग्रीहरूलाई यस खण्डमा राखिएको छ। परिशिष्ट- क र परिशिष्ट- ख गरी मुख्य दुईभागमा विभाजित यस खण्डका परिशिष्टभागमा पनि शीर्षकीय व्यवस्थापन तथा प्रकरणविभाजन र तदन्तर्गतका उपशीर्षकको स्थपनासहित ग्रन्थको मूलपाठको सम्पादनमा अपनाइएको पद्धतिको अनुसरण गरिएको देखिन्छ। प्रथम परिशिष्टमा गण्डकीक्षेत्रमाहात्म्य, पशुपतिपुराण, नेपालमाहात्म्य, वैश्वानरपुराण आदि विषय छन् भने द्वितीय परिशिष्टमा तीर्थप्रकरण, शक्तिप्रकरण, शिवप्रकरण, गोरक्षप्रकरण आदि अनेक प्रकरणहरू र तिनका पनि अवान्तर शीर्षकोपशीर्षक रहेका छन्। यसप्रकार यो अभिनव सम्पादन सुव्यवस्थित बनेर आएको स्पष्ट हुन्छ।

४. उपसंहार

समय र परिस्थितिले मात्र होइन; वैयक्तिक सम्बन्ध र अनुसन्धानको आवश्यकताले समेत विद्वान्हरू नयाँ नयाँ खोज र अनुसन्धानमा प्रवृत्त हुन्छन्। यो सार्वकालिक सत्य हो। नेपाली इतिहास र नेपालका धर्म, संस्कृति, परम्परा, राज्यप्रणाली, शासनव्यवस्था आदिका बारेमा अनुसन्धान गर्दा अध्ययन नगरी अनुसन्धान पूर्ण हुनै नसक्ने खालको ग्रन्थ हिमवत्खण्डको पुनःसम्पादन, पुनःअर्थापन वर्तमान समयको माग र आवश्यकता दुवै बनेको सन्दर्भमा सम्पादन, अनुवाद एवं टीकाप्रणयनमा सिद्धहस्त विद्वान् प्रा. डा. वेणीमाधव ढकालज्यूले योगी नरहरिनाथसँगको सान्निध्यबाट उहाँमा स्थिर बनेको अगाध श्रद्धा र हिमवत्खण्डको मूल्यवत्ताबोधबाट अभिप्रेरित भई यो गुरुतर सम्पादनकार्य सम्पन्न गर्नुभएको छ। यसका लागि नेपाली समाज मात्र नभई अनुसन्धानमा अभिरुचि राख्ने जुन कुनै पनि अध्येता उहाँप्रति कृतज्ञ हुनेछन् र यस ग्रन्थको उपयोग गरी लाभान्वित समेत हुनेछन् भन्नेमा म पूर्ण विश्वस्त छु। यस्तो स्तुत्य कार्यमा आफूले पनि यथाशक्य सानै भए पनि योगदान पुऱ्याउने अवसर पाएकामा मलाई प्राप्त भगवती भारतीको प्रसाद र गुरुकृपाप्रति नतमस्तक हुँदै यस संक्षिप्त आलेखलाई यहीं विराम दिन्छु।

– प्रा. डा. जीवन अधिकारी
नेपाल संस्कृत विश्वविद्यालय

॥ ॐ तत् सत् ॥

# नेपालको गरिमाका रूपमा हिमवत्खण्ड

पृष्ठभूमि

पौरस्त्य जगत्मा ज्ञानको प्रारम्भ वेदबाट भएको हो। त्यसैले वेदलाई ज्ञानको आदिस्रोत मानिन्छ। विश्ववाङ्मयमा वेदभन्दा पुरानो कुनै पनि साहित्य नभएको विषय निर्विवाद सर्वमान्य छ। वेद सबैका लागि अध्ययनीय, मननीय र उपासनीय छ। मानवको कल्याणका निमित्त वेदले ज्ञान, कर्म र उपासना गरी तीन मार्गको उपदेश गरेको छ। ज्ञानको सम्बन्ध बुद्धिसँग हुन्छ भने उपासना श्रद्धा र विश्वाससँग गाँसिएको हुन्छ। प्रत्येक कर्मको मूल आधार ज्ञान र उपासना नै हो। त्यस्तै ज्ञानार्जनका लागि कर्म र उपासना आवश्यक छ भने उपासनाका लागि ज्ञान र कर्म अपेक्षित छ। ज्ञानले हामीलाई लक्ष्यबोध गराउँछ, कर्मले लक्ष्यसम्म लैजान्छ र उपासनाले लक्ष्यमा आसीन गराउँछ। वेदलाई त्रयी भन्नुमा यो पनि एउटा कारण हुनसक्छ।

जनसाधारणले सहजै वेदप्रतिपादित मार्ग अवलम्बन गरेर संसारसागर तर्न सकून् भन्ने अकारण-करूणाले भरिएका महर्षि वेदव्यासले पुराणको सिर्जना गर्नुभयो र सरल उपायबाट मानवमात्रले आचरण गर्न सक्ने भक्तिमार्गको उत्तमता देखाउनुभयो। त्रयीद्वारा प्रतिपादित ज्ञान, कर्म र उपासनालाई परिवर्तित आकार दिँदै स्तुति, प्रार्थना र उपासनाको स्वरूपमा वर्णन गर्नुभयो। पुराणवाङ्मयद्वारा प्रवर्धित भक्ति उक्त तीनै मार्गको पवित्र सङ्गम- त्रिवेणी बन्यो। अध्यात्ममार्गमा ज्ञान मानवमस्तिष्कको आहार हो, कर्म उसको प्राण हो र उपासना सन्तप्त हृदयको शीतलछायासम्पृक्त विश्रामभूमि हो। पुराणवाङ्मयले त्रयीका यिनै विषयलाई विस्तार गरी अधिकारीविशेषको सीमाभन्दा बाहिर सार्वकालिक र सार्वजनिक गरेको छ।

१. पुराण

पुराणमा आएका आख्यानहरू वैदिक आख्यानकै उपबृंहण (विस्तार) हुन्। आख्यानको बीज मन्त्रसंहितामा नै पाइन्छ भने त्यस्ता बीजको वास्तविक विस्तार ब्राह्मणग्रन्थमा भएको पाइन्छ। यस्ता आख्यानलाई लौकिक स्वरूप प्रदान गरेर पुराणले विस्तार गरेको छ। वस्तुतः आख्यानको वास्तविक तात्पर्य पत्ता लगाउन वेदकै शरण पर्नुपर्छ। पुराणसाहित्य वैदिकवाङ्मयकै विस्तार हो। हिमवत्खण्डले प्रतिपादन गरेको आख्यान पनि वैदिक वाङ्मयकै बीजविस्तार हो। कतिपय यस्ता आख्यानहरू छन् जो पुराणमा आइपुग्दा लोकमर्यादाविरुद्ध जस्ता देखिन्छन् तर वेदमा त्यस्ता आख्यानहरूको यथार्थ स्वरूप शास्त्रसम्मत, मर्यादित र यथार्थपरक देखिन्छ। इन्द्र-अहल्या-सम्बन्ध, विष्णु-वृन्दा-सम्बन्ध, ब्रह्मा-सरस्वती- सम्बन्ध जस्ता आख्यानको तात्पर्य बुझ्न वेदभन्दा अर्को मार्ग छैन। वेदानुगामी भएर नै पुराणसाहित्य प्रामाणिक मानिन्छ। वेदार्थको नै पुराणले उपबृंहण गरेकोमा पौरस्त्य शास्त्रचिन्तकहरू एकमत छन्।

श्रुतिस्मृतिपुराणानां विरोधो यदि दृश्यते। तत्र श्रौतं प्रमाणं तु द्वयोर्द्वैधे स्मृतिर्वरा॥

यस व्यासस्मृतिको वचनानुसार वेद-स्मृतिसिद्धान्त-विरुद्ध पौराणिक वचन स्वयं अग्राह्य हुन्छ। पुराणमा आएका कतिपय इतिहासमूलक घटनाहरूबाट धर्माधर्मको निर्णय हुन सक्दैन। पुराणवाङ्मयको मर्म बुझ्नका लागि सामान्य शास्त्रज्ञानले पुग्दैन। वेद-वेदाङ्ग र दर्शनशास्त्रको समेत विशेष ज्ञान आवश्यक पर्दछ। पुराणवाङ्मयमा कुनै विषयको प्रतिपादन गर्न अर्थवादको प्रयोग भएको हुन्छ। अर्थवादमा अक्षरार्थभन्दा पनि तात्पर्यार्थको महत्त्व हुन्छ। कतै महापुरुषहरूको आचरण लोकविरुद्ध देखाइएको हुन्छ र त्यसको दुष्परिणाम पनि देखाइएको हुन्छ। त्यसको तात्पर्य हुन्छ कि कोही जतिसुकै महान् भए पनि उसका सबै आचरण ग्राह्य हुँदैनन्। कतै महान् लोकोत्तर पुरुषको लोकविरुद्ध आचरण देखाइए पनि दुष्परिणाम देखाइएको हुँदैन तथापि त्यो लोकका लागि आचरणीय हुँदैन। त्यो त्यस्ता व्यक्तित्वको लोकोत्तरता बुझाउनका लागि हो। यस्ता आचरणका विषयमा आपस्तम्बधर्मसूत्रको निर्देश स्मरणीय छ-

दृष्टो धर्मव्यतिक्रमस्साहसं च पूर्वेषाम्, तेषां तेजोविशेषेण प्रत्यवायो न विद्यते, तदन्वीक्ष्य प्रयुञ्जानस्सीदत्यवरः।

(२.१३, ७-९)

हाम्रा पूर्वज देव-ऋषि, महर्षि-महापुरुषहरूको आचरणमा धर्मोल्लङ्घन तथा साहसी कर्महरू देखिन्छन्, परन्तु त्यस्ता लोकोत्तर व्यक्तिहरूमा सामर्थ्यको प्रचुरता हुनाले उनीहरूका लागि त्यस्ता कर्महरू पापकर्म बन्न सक्दैनन्। यदि लोकसाधारणले यस्ता महापुरुषहरूको आचरण अनुसरण गर्छ भने तत्कर्मजन्य प्रत्यवायको भागी बन्दछ। पुराणवाङ्मयको अर्को महत्त्वपूर्ण पक्ष कतै-कतै धर्म, भक्ति, ज्ञान, वैराग्य आदि विषयको गौरव/लाघव देखाएर धर्मज्ञान प्रस्तुत गरिएको हुन्छ। यस्ता विषयहरूको तात्पर्य व्यष्टि र समष्टिका आधारमा समष्टिको हानि हुने अवस्था भए व्यष्टिको त्याग उपयुक्त हुन्छ भन्नुमा

रहेको हुन्छ। यस्ता अनेकौँ विषयमा फराकिलो दृष्टिकोणद्वारा विचार गर्न सके पौराणिक अंशको आलोचना राम्रोसँग हुनसक्छ र पुराणवाङ्मयको लोकोत्तर इतिहासलाई सही रूपमा बुझ्न सकिन्छ। समयको सुदीर्घ अन्तरालमा पुराणहरूमा प्रक्षिप्तांश समावेश भएको हुन सक्छ तर यति नै प्रक्षिप्तांश हो भन्ने निश्चय गर्ने कसौटी छैन।

मन्त्रब्राह्मणात्मक शब्दराशि वेदको शाखा ११३१ संख्यामा रहेको उल्लेख पाइन्छ। मन्त्रराशिको उपबृंहण (विस्तार) ब्राह्मणभागले गरेको छ। ११३१ मन्त्रसंहिताका त्यत्तिकै संख्यामा ब्राह्मण (आरण्यक, उपनिषद्सहित) त्यत्तिकै संख्याका श्रौतसूत्र, गृह्यसूत्र, शुल्बसूत्र लगायत वैदिकवाङ्मयको अध्ययन गरेर मात्र प्रक्षिप्तांश निश्चित गर्न सकिन्छ। कसैले उल्लेख नगर्दैमा यो भाग प्रक्षिप्तांश हो भन्ने आधार छैन। प्रकाशित स्कन्दपुराणमा हिमवत्खण्ड नपाइए तापनि स्कन्दपुराणको प्रक्षिप्तांश हिमवत्खण्ड हुन सक्दैन। सातौं शताब्दीको हस्तलिखित स्कन्दपुराण नेपालको पुस्तकालयमा पाइएको कुरा पुराणवाङ्मयका इतिहासकारहरूले उल्लेख गरेका छन्। स्कन्दपुराण अठार पुराणमध्येकै विशालकाय पुराण हो। यसमा भारतवर्षीय विभिन्न तीर्थस्थल र देवालयहरूको माहात्म्य समाविष्ट छ। स्कन्दपुराणको विषयवस्तुका बारेमा भारतीय विद्वान्हरूले आ–आफ्ना स्वतन्त्र कृतिहरूमा पर्याप्त चर्चा गरेका छन्। अन्तर्वस्तुको विवेचनामा पनि आफ्ना स्वतन्त्र लेखनी चलाएका छन्। कतिपय महत्त्वपूर्ण कार्य हुँदाहुँदै पनि हिमवत्खण्डको नामोल्लेखसम्म नहुनु आश्चर्य लाग्दो छ। स्कन्दपुराणको प्रचीन हस्तलिखित प्रति नेपालमा पाइएको चर्चा गर्दा समेत हिमवत्खण्डले यथोचित स्थान पाउन सकेन। फलतः वर्तमानमा विभिन्न स्थानबाट प्रकाशित भएका स्कन्दपुराणमा हिमवत्खण्ड अट्न सकेन र विद्वान्हरूको दृष्टिबाट ओझेलमा नै परिरह्यो।

## २. तीर्थक्षेत्र

पृथिवी स्वाभाविक रूपमा पवित्र मानिए तापनि कतिपय क्षेत्रहरू विभिन्न कारणले उत्तम र अति पवित्र मानिन्छन्। यिनै अति पवित्र क्षेत्रहरूलाई तीर्थक्षेत्रको रूपमा लिइन्छ। कुनै क्षेत्रहरू विशेष प्रभावले तीर्थक्षेत्र कहलाउँछन् भने कतिपय पुण्यनदीहरूको सान्निध्यले। ऋषिमुनिको तपस्या र भगवान्का दिव्य अवतारले पनि कतिपय भूभाग विशेष तीर्थस्थल मानिन्छन्। तीर्थको अस्तित्वलाई वैदिक वाङ्मयले पनि आत्मसात् गरेको छ–

ये तीर्थानी प्रचरन्ति ...। (शु.य. – १६.६१), नमस्तीर्थ्याय च ...। (शु.य. – १६.४२), तीर्थेभ्य आनन्दम् ...। (शु.य. – ३०.१६), अरित्रं वां दिवस्पृथुतीर्थे सिन्धूनां रथः ...। (ऋ.– १०.४६.८), तीर्थमेवोदयनीयोऽतिरात्रः, तीर्थेन ह्युत्स्नान्ति, तद्यदुदयनीयमतिरात्रमुपयन्ति, यथा तीर्थेन समुद्रं प्रस्नाय तीर्थे नोत्स्नायुः ...। (शत. ब्रा.– १२.२.५)

वैदिक वाङ्मयमा स्वाध्यायलाई ठूलो महत्त्व दिइएको छ। स्वाध्यायबाट नै यज्ञ, दान, तप जस्ता अनुष्ठानहरू सिद्ध हुन्छन्। गुरुमुखबाट प्राप्त स्वाशाखीय वेदाध्ययनलाई स्वाध्याय भनिन्छ। स्वाध्यायोऽध्येतव्यः, स्वाध्यायान्मा प्रमद जस्ता वेदका विधिवचनहरू छन् जसले स्वपरम्परा प्राप्त वेदको निरन्तर पाठपारायण अध्ययनबाट विराम लिन नहुने आज्ञा दिन्छन्। वैदिकयुगमा यस्ता वेदवचनलाई व्यवहारतः पालना गर्ने परम्परा थियो। घर घरमा स्वाशाखीय वेदध्वनि गुञ्जन्थ्यो। श्रौतयागको प्रचुरताका कारण यज्ञहरू नै मानिसका लागि उपास्य, सेव्य र दर्शनीय थिए। पछि रामायणकालमा समेत स्वाध्यायको परम्परा अविच्छिन्न थियो भन्ने सङ्केत वाल्मीकीय रामायणको प्रथम श्लोकले दिन्छ –

तपः स्वाध्यायनिरतं तपस्वी वाग्विदां वरम्।

महाभारतका कतिपय प्रसङ्गले पनि स्वाध्यायको महिमालाई उजागर गरेका छन्। समयको गतिसँगै यो परम्परा शिथिल बन्दै गयो र नित्य वेदाध्ययन र श्रुतिप्रतिपादित यज्ञको परम्परा छुट्दै गयो।

भक्तिमार्गले सामाजिक आस्था र विश्वासलाई प्रभाव पारेपछि तीर्थक्षेत्र, देवमन्दिर, तीर्थयात्रा आदिका उत्सव र महत्त्व बढ्न थाले। स्वाध्याय र वैदिक कर्महरू पछि पर्दै गए। पौराणिक, तान्त्रिक मन्त्र–तन्त्रहरूको प्रचार हुन थाल्यो। वैदिक देवता, यज्ञ, वेदमन्त्र आदि वैदिक परम्पराको स्थानमा पौराणिक देवता, विभिन्न भगवदवतार, देवप्रतिमा, देवालय, तीर्थक्षेत्रहरूको उत्सव र यात्राहरूको परम्परा चल्यो। वस्तुतः वेदमा बीजका रूपमा रहेका यी विषयहरू समयको अन्तरालमा प्रस्फुटित र विकसित भए। बाह्य साधनमा परिवर्तन भए पनि आन्तरिक साध्यमा परिवर्तन भएको छैन। साध्यमा एकरूपता नै छ। तीर्थक्षेत्रबाट हुने पुण्यको प्रभावले सबैलाई प्रभावित बनायो। त्रिकालदर्शी ऋषिहरू तीर्थक्षेत्रका अकारण करुणालाई गाउन तल्लीन भए र पवित्र माहात्म्यग्रन्थहरूको निर्माण गर्दै गए। श्रुतिवचनको आश्रय लिई तीर्थस्थलको विकास गर्न र तत्सम्बन्धी धार्मिक साहित्यको सिर्जना गर्न तपःपूत ऋषिहरूको अतुलनीय योगदान छ। तीर्थक्षेत्रको व्यापक प्रचार–प्रसार स्मृतिशास्त्र र पुराणवाङ्मयको उदयपश्चात् भएको पाइन्छ। विभिन्न कारणहरूले श्रौतयागमा शिथिलता आएपछि तीर्थयात्रा, देवमन्दिर, मूर्तिपूजा जस्ता विषयले मानिसका आस्थामा गहिरो छाप पार्‍यो।

निर्मल अन्तःकरण भएका तपस्वीहरू र भगवान्का परम उपासक भक्तजनहरू पनि तीर्थका रूपमा वन्दनीय मान्न थालियो-

भवद्विधा भागवतास्तीर्थीभूताः स्वयं विभो। तीर्थीकुर्वन्ति तीर्थानि स्वान्तस्थेन गदाभृता ॥

(श्रीमद्भागवत, १-१३-१०)

तीर्थक्षेत्र मानवजीवनमा यात्रा गर्नुपर्ने विशेष क्षेत्रभित्र पर्दछ। हाम्रा शास्त्रहरूले पुरुषार्थ सिद्ध गर्ने विभिन्न मार्ग प्रदर्शन गरेका छन्। तीर्थक्षेत्रको सेवनबाट मानवमा मानवता प्रकट हुन्छ। जीवनको ध्येय पहिल्याउन मद्दत मिल्छ। सनातन धर्ममा मात्र नभएर संसारमा चलेका अन्य धर्ममा पनि तीर्थक्षेत्रको गरिमा र महिमालाई उच्च स्थान दिइएको छ।

सनातन धर्मका अनुयायीहरूको श्रद्धा, आस्था र समर्पणले तीर्थयात्राको अविच्छिन्न परम्परालाई अक्षुण्ण राख्दै तीर्थक्षेत्रको पवित्रतालाई जोगाइराखेको छ। यस्ता क्षेत्रको महिमालाई पुस्तान्तरण गर्न हाम्रा पुराणवाङ्मयको अवर्णनीय योगदान छ भने आस्तिक समाजको पनि कम भूमिका छैन।

हिमालयलाई आधार बनाएर रहेका महत्त्वपूर्ण पुण्यक्षेत्रहरूको यशोगाथा हिमवत्खण्डले गाएको छ। हिमवत्खण्ड नेपालको यशोगान गर्ने पुराणवाङ्मय हो जसले नेपाली संस्कृति र नेपाली माटोलाई आफूमा सुरक्षित राखेको छ। हिमालयपालित नेपालभूमिमा प्राचीनकालदेखि नै महत्त्वपूर्ण तीर्थक्षेत्रहरू रहेका छन्। यस्ता क्षेत्रहरूको महिमा प्रायः जनश्रुतिमा रहेको पाइन्छ तर यस्ता जनश्रुतिका विषयलाई शास्त्रीय रूपमा प्रमाणित गर्ने आधारहरू पर्याप्त न पाउँदा दिनानुदिन ती क्षेत्रहरू ओझेलमा परिरहेका छन्। ऋषि, मुनि, तपस्वी, साधकहरूको अनवरत तपस्याले पावन बनेको पुण्यभूमि हिमालय र हिमनदीहरूको पवित्र जलले सिञ्चित कतिपय नदीतटहरू आज पनि तपस्वी साधकहरूको आश्रयक्षेत्र बनेको छ तर यस्ता क्षेत्रहरू नगण्य मात्रामा देखिन्छ। यदि हिमवत्खण्डले महिमा वर्णन गरेका क्षेत्रहरूको खोज गरी जनमानससमक्ष त्यसको धार्मिक महिमा पुऱ्याउन सके धेरै सज्जनहरू लाभान्वित हुन सक्छन्। कुनै पनि तीर्थक्षेत्रको महत्त्व जानेर यात्रा, दर्शन, परिक्रमा आदि कृत्य गर्दा भक्तको अभीष्ट सिद्ध हुन्छ। यसको अभावमा तीर्थक्षेत्रप्रतिको हेयभाव बढ्दै जाँदा समाजमा नास्तिकताले प्रश्रय पाउँछ, पाइरहेको पनि देखिन्छ। हिमालयको काखमा रहेका विभिन्न तीर्थस्थलहरूको परिचय, महत्त्व देखाउन र मानिसहरूको तीर्थक्षेत्रप्रतिको आस्था बढाउन हिमवत्खण्डको ठूलो आवश्यकता देखिन्छ। जानेर नजानेर वा लहै-लहैमा नै भने पनि वर्षेनी हजारौं नेपालीहरू नेपालका विभिन्न तीर्थक्षेत्रमा भ्रमण गर्दछन्। यी क्षेत्रको गौरवगाथा समेत ती यात्रीहरूलाई बोध गराउन सके समाजको धार्मिक चेतना बढाउन थप बल पुग्न सक्छ र सनातन धर्मप्रति बढिरहेको अतिक्रमण रोक्न समेत बल पुग्छ। हिमवत्खण्डले अतिशय महिमा गाएका कतिपय तीर्थक्षेत्रहरू अतिक्रमणको चपेटामा परिसकेका छन् र अस्तित्व गुमाइसकेका छन्। ती पुण्यक्षेत्रको संरक्षण गर्न हिमवत्खण्डको सहायता अत्यावश्यक छ।

३. हिमालय

हिमालय सृष्टिको आदिकालमा जस्तो थियो आज पनि उस्तै छ। देवताहरूको हिमालय, शिवको विश्रामालय तपस्वीहरूको साधनालय वस्तुतः हिमालय आनन्दको अथाह महिमालय हो। हजारौं वर्ष पहिलेका हाम्रा पूर्वजहरूको हिमालय र आज हामीले देखेको हिमालयमा कुनै प्रकारको विकृति छैन, विकृति छ त मानवीय बुद्धि र व्यवहारमा।

सांसारिक वेदनाबाट आक्रान्त भएर जो सुकै व्यक्ति पनि आनन्दको खोजीमा भौंतारिँदै पुग्ने आशाको आधार हिमालय नै हो। जो जेको खोजीमा हिमालय पुग्छ उसले त्यस्तै चीज पाउँछ जुन उसले आवश्यक ठान्दछ। व्यक्ति चञ्चल छ, अधीर छ र विक्षिप्त छ। हिमालय यसको विपरीत अचल, सुधीर र शान्त छ। तपस्वीहरूको तपस्याको धवलताले हिमालयका शिखरहरू स्फटिक समान सेता र चम्किला छन्। साधकहरूका प्रखर साधनाका प्रभावबाट आलोकित हिमालयका कन्दराहरू आज पनि अध्यात्म-जिज्ञासुहरूका लागि आकर्षणका केन्द्र बनेका छन् र मुमुक्षुहरूको आश्रयस्थल भएका छन्। यही हिमालय हो जसले भौतिकतामा डुबेकालाई समेत अमन्द आनन्द प्रदान गर्दै मोहित पारेको छ।

ऋषिमुनिहरूको तपोभूमि दिव्यात्माहरूको वासस्थली हिमालय वस्तुतः मानवजीवन र जगत्का विविध रहस्यहरू केलाउने ज्ञानभूमि हो। हिमालय बाह्य दृष्टिमा जति कठोर, अगम्य र भययुक्त देखिन्छ अन्तर्दृष्टिमा त्यति नै कोमल, सुगम र निर्भय देखिन्छ। यहाँका कतिपय गुफाहरू आज पनि समाधिमा निमग्न महापुरुषहरूद्वारा सुशोभित छन्। भनिन्छ साधनाका कतिपय गुह्य रहस्यहरू यहींका गुफामा तपस्यारत साधकहरूसँग सुरक्षित छन्। पौराणिक, धार्मिक र ऐतिहासिक महत्त्व राख्ने सयौं नदी र सरोवरहरूको उद्गमस्थल हिमालय नै हो जसको दर्शनका लागि लाखौं व्यक्तिहरू यात्रा गर्दछन्। वस्तुतः हिमालय मानवको मात्र नभएर स्थावर र जङ्गमको नै श्रद्धा, आस्था र आधारको केन्द्र हो। आज पनि हिमगिरिको प्राकृतिक

रमणीयताले सहृदयका हृदयमा श्रद्धा, आस्था र समर्पणको मूल फुटाउँछ, आलसी–प्रमादीलाई जागरूक र परिश्रमी बनाउँछ। हाम्रा हिमगिरिका गुफा, नदी र झरनामा देवत्वको दर्शन गराउँछ, सजीवताको आभास गराउँछ। इदमहमनृतात् सत्यमुपैमि को सङ्कल्पलाई हाम्रा मनमा सुदृढ बनाउँछ। अनादि अपौरुषेय शब्दराशि वेदमा हिमालय र हिमालयबाट निःसृत पवित्र हिमनदीहरूको लोकोत्तरमहत्त्व बताइएको छ। यस्ता पवित्रतम नदीहरू नेपालमा नै रहेका छन् जसको समुचित अन्वेषण र प्रचार हुन सकेको छैन। हिमालयको प्रशस्तिमा वेदले कन्जुस्याइँ गरेको छैन–

यस्ये मे हिमवन्तो महित्वा ... (ऋ.–१०.१२१.४), (शु.य.–२५.१२), ... हिमवते हस्ती (शु.य.– २४.३०)।

मानवमा हिमालयप्रति ममताभाव जागृत गराउन पुराणसाहित्यको महत्त्वपूर्ण योगदान छ। पुराणहरूमा हिमालयको वर्णन ज्यादै मनमोहक ढङ्गबाट गरिएको छ। संस्कृत वाङ्मयका कतिपय काव्य–महाकाव्यहरू हिमालयको मोहकता र मादकताका वर्णनले भरिएका छन्। भगवान्‌का विभिन्न अवतारको दिव्यलीला सुन्न–सुनाउन पनि देवातात्माहरू अनेक स्वरूप धारण गरी हिमालयमा आश्रित हुन्छन्। मानव–सुलभ मनोविकारको क्षयका लागि पनि पवित्रभूमि हिमालय अमृतोपम औषधी हो। भक्ति, ज्ञान र वैराग्यका लागि अन्तःकरणको शुद्धि आवश्यक हुन्छ। अन्तःकरण पवित्र नभई पारमार्थिक मार्गको पथिक बन्न सकिँदैन। भगवान्‌का दिव्यलीलाको श्रवणमा रुचि उत्पन्न गर्न सन्तहरूको सान्निध्य चाहिन्छ। त्यस्ता सन्तहरूको नित्य–निवास भएको हिमालयमा गएर सत्सङ्ग गरेपछि गरुडजस्ताको मोहभङ्ग भयो। भगवान् रामका अमल यशोगाथा गाउँदै कालभुसुण्डी नीलगिरिमा निवास गर्दछन् भन्ने रामचरितमानसमा उल्लेख छ–

मिलहि न रघुपति बिनु अनुरागा, किएँ जोग जप ज्ञान विरागा।
उत्तर दिसि सुन्दर गिरि नीला, तहँ रह काकभुसुन्डी सुसीला॥
रामभगति पथ परम प्रबीना, ज्ञानी गुनगृह बहुकालीना।
रामकथा सो कहे निरन्तर, सादर सुनहि विविध विहंगवर॥
जाई सुनहुँ तहँ हरिगुन भूरी, होइही मोहजनित दुख दूरी।

(रामचरितमानस, उ.का., ८४, १–५)

अर्थात् भगवान् शिव भन्नुहुन्छ– हे गरुड ! योगाभ्यास, जप, ज्ञान, वैराग्य भए पनि गहिरो प्रेम नभैकन रघुनाथजी भेट्टिनुहुन्न। उत्तरदिशामा सुन्दर नीलगिरिपर्वत छ। त्यहाँ असल स्वभाव भएका कागभुसुण्डी बस्दछन्। ती रामजीका भक्तिका विषयमा अतिचतुर, ज्ञानवान्, गुणी र वृद्ध छन्। ती निरन्तर रामजीका कथा भन्दछन्। अनेक पक्षीहरू आदरका साथ सुन्दछन्। तिमी पनि त्यहाँ गएर रामजीका अनन्त गुण सुन। मोहले पैदा गरेको दुःख दूर हुनेछ।

गएउ गरुड जहँ बसै भुसंडी, मती अकुंठ हरिभगति अखंडी।
देखी सैल प्रसन्नमन भएउ, माया मोह सोक सब गएउ।

(रामचरितमानस उ.का.)

अर्थात् अकुण्ठित बुद्धि भएका, अखण्डित हरिभक्ति गर्ने कागभुसुण्डी जहाँ बसेका थिए गरुडजी त्यहीँ गए। नीलगिरिपर्वत देख्ने बित्तिकै गरुडजीको मन प्रसन्न भयो। माया, मोह, शोक, सुर्ता सबै हट्यो। दर्शनले मात्र पनि यति ठूलो प्रभाव पार्ने नीलगिरि आज पनि उही सामर्थ्य लिएर हाम्रा सामु खडा छ।

महाकवि कालिदासले कुमारसम्भवमहाकाव्यको प्रारम्भमा नै देवतात्मा भनेर हिमालयको आध्यात्मिक स्वरूपको सङ्केत गरेका छन्–

अस्त्युत्तरस्यां दिशि देवतात्मा हिमालयो नाम नगाधिराजः।
पूर्वापरौ तोयनिधी वगाह्य स्थितः पृथिव्या इव मानदण्डः॥

(कुमारसम्भव, १.१)

अन्य पुराणहरूले जस्तै हिमवत्खण्डले पनि हिमालयलाई चेतनाका रूपमा प्रस्तुत गरेको छ। हिमालयले आफ्नो सूक्ष्मस्वरूपको आश्रय लिई मानवले झैं तपस्या, विवाहजस्ता विभिन्न गतिविधि गरेको कुरा हिमवत्खण्डको सातौं अध्यायले प्रष्ट पारेको छ। ब्रह्माजीबाट वर पाएको हिमालयले पितृकी कन्या मेनासँग विवाह गरेको विषय यसरी बताइएको छ–

एवमस्तु हि ते पुत्र यथा वदसि तत्तथा।
भवतात् कामरूपी त्वं यत्रेच्छासञ्चरो भव॥
कन्यामुद्वाह्यतां पुत्र पितृणां कुलसम्भवाम्।

तेऽपि दास्यन्ति ते पुत्रीं तल्लोकं व्रज निश्चितम् ॥ (हि.ख. ७/४३-४४)
सङ्कल्प्य विधिवत् कन्यां मेनाख्यां पितरः पुरा।
ददुर्हिमवतेऽगस्त्य सधेनुस्वर्णदक्षिणाम्। (हि.ख. ७/५०)

हिमवत्खण्डले हिमालयको आधिदैविक र आध्यात्मिक प्रभावको विस्तृत वर्णन अनेक आख्यानको माध्यमले प्रस्तुत गरेको छ। आफ्नी पत्नी मेनासहित हिमालयले कठोर तपस्याबाट भगवान् शिव (पशुपति) लाई प्रसन्न बनाई अभीष्ट सिद्ध गरेको वर्णन हिमवत्खण्डमा उल्लेख छ। हिमालयको दर्शन, स्पर्शनबाट जीवजगत्ले पाउने आनन्द भगवान् शिव (पशुपति) को कृपाप्रसादको फल हो। हिमालयको स्थूलरूप पाषाणमय भए पनि सूक्ष्मरूप चेतनामय छ। भगवान् पशुपति हिमालयलाई वर दिँदै भन्नुहुन्छ-

भूधराणां वरो भूयाः सर्वदा मे प्रसादतः।
देवानां निलयो भूयाः सिद्धानां भव पर्वत ॥
तपस्विनां तपोभूमिः सर्वकाले भवाचल।
काङ्क्षितानि च तेषां वै फलदा भूमयो हि ते ॥
यावन्ति तव शृङ्गाणि सन्ति भक्त हि सन्ततम्।
तावन्ति च पवित्राणि भवन्तु मत्प्रसादतः ॥ (हि.ख. ६९, २३-२७)

## ४. हिमवत्खण्डको विषय

बृहत्काय स्कन्दपुराण खण्डात्मक र संहितात्मक गरी दुई प्रकारले छुट्याइएको देखिन्छ। खण्डात्मक भागमा माहेश्वरखण्ड, वैष्णवखण्ड, नागरखण्ड, प्रभासखण्ड लगायत विभिन्न खण्डहरू छन् जसले विभिन्न तीर्थक्षेत्रहरूको अनुत्तम महिमा प्रकाशित गरेको छ। कतिपय खण्डहरू अझै पनि प्रकाशमा आएका छैनन्। हिमवत्खण्ड पछिल्लो समयमा प्रकाशित भएको विभिन्न खण्डमध्ये स्कन्दपुराणकै एक खण्ड हो। समग्र स्कन्दपुराणको मौलिक पक्ष तत्तत्क्षेत्रको धार्मिक, सांस्कृतिक, भौगोलिक विवरण यथार्थ रूपमा पस्कनु रहेको देखिन्छ र हिमवत्खण्डले पनि नेपालस्थ धार्मिक क्षेत्रको विशद स्वरूप प्रकाशन गरेको छ।

हिमवत्खण्डले हिमालयको काखमा रहेको नेपालको धेरैजसो धार्मिक क्षेत्रको अपरिमेय महिमा मुक्तकण्ठले गान गरेको छ। यसमा पनि काठमाडौं उपत्यका वरपरका विभिन्न क्षेत्रहरूको महिमा वर्णन गर्दा भगवान् श्रीपशुपतिनाथलाई केन्द्रविन्दु बनाएको पाइन्छ। वाग्मती नदीको वर्णन गर्ने क्रममा विभिन्न घाटक्षेत्रहरूको वर्णन पनि ज्यादै रोचक ढङ्गबाट प्रस्तुत गरिएको छ। भगवान् श्रीपशुपतिनाथको उत्पत्तिका विषयमा हिमवत्खण्डले जति विस्तृत चर्चा गरेको छ त्यो विवरण पुराणान्तरमा दुर्लभ छ। वर्तमान नेपालको सीमाभन्दा बाहिर पूर्वमा कामाख्या र पश्चिममा बदरिकाश्रमसम्मको महत्त्व समेटिएकोले र मानसरोवरको महत्त्व पनि विशेषरूपमा प्रतिपादन भएकोले हिमवत्खण्ड आफैंमा सार्थक पनि छ। आकारप्रकार र विषयवस्तुका दृष्टिबाट विचार गर्दा हिमवत्खण्ड १८८ अध्यायमा विभक्त छ। यसको विषय वर्णनशैलीले अन्य पुराणप्रसङ्गसँग सामीप्य राख्दछ।

स्कन्द पुराणान्तर्गत रहेको हिमवत्खण्डभित्र हिमालयको असीम गाथा समेटिएको छ। विशालकाय हिमवत्खण्डले हाम्रा मनभित्र जरो गाडेर बसेका कतिपय नेपालका धार्मिक क्षेत्रसम्बन्धी प्रश्नहरूको उत्तर सहजै दिनेछ। हिमवत्खण्डले प्रतिपादन गरेका केही विषयहरूलाई प्रस्तुत सन्दर्भमा संक्षिप्त उल्लेख गर्नु सान्दर्भिक हुन्छ। यस हिमवत्खण्डमा सर्वप्रथम विषयवस्तुको प्रारम्भ सृष्टिप्रक्रिया र सृष्टिविस्तारको वर्णनबाट गरिएको छ। पृथिवीको उद्धार, हिमालयको महिमा, विभिन्न देवताहरूले गरेको तपस्या र तत्सिद्धि, देवासुरसंग्राम, जयपराजय, हिरण्याक्षको वधसँगै विभिन्न शैलपर्वतको महत्त्व जस्ता पौराणिक विषयलाई हिमवत्खण्डले आफ्नो प्रारम्भिक वर्ण्य विषय बनाएको छ।

नेपाली समाजमा शिक्षाको प्रचार निकै ढिलो भएकोले जनमानसमा बौद्धिक चेतनाको विकास पनि निकै कम भएको पाइन्छ। तर, संस्कृत पठन-पाठनको प्रचलन भने पहिलेदेखि नै चलेको पाइन्छ। विद्याप्रचार गाउँ-गाउँमा जन-जनमा नपुगे तापनि संस्कृतका विद्वान्हरूको अभाव भने भएन। संस्कृत-वाङ्मयका मर्मज्ञ विद्वान्हरूले नेपाली विद्वत्परम्परामा आफ्नो महत्त्वपूर्ण योगदान दिएका छन्। आफ्नो अप्रतिम सारस्वत प्रतिभाले संस्कृत वाङ्मयलाई अलङ्कृत पारेका छन्। सकृतिदत्त पन्तजस्ता विद्वान्को सिर्जना कार्तवीर्योदय जस्ता महाकाव्यले संस्कृत वाङ्मयलाई गौरवान्वित पारेका छन्।

यस्ता अनेकौं विद्वान्हरू नेपालमा हुँदाहुँदै पनि नेपालको धार्मिक सांस्कृतिक गौरवगाथा गाउने र धर्मप्राण जनतालाई आफ्नो जन्मभूमिको महत्त्वबोध गराउने हिमवत्खण्ड एउटा कुनामा थन्किनु सान्दर्भिक विषय होइन। काव्य,

महाकाव्यजस्ता विशिष्ट ग्रन्थको सिर्जना गर्ने प्रतिभाले हिमवत्खण्ड सम्पादन गर्न नसक्ने प्रसङ्ग होइन तर विद्वान्हरूले हिमवत्खण्डप्रति देखाएको उपेक्षा विचारणीय छ। संस्कृतका पारम्परिक विद्वान्हरूमा शास्त्रीय पाण्डित्यको प्रचुरता पाइए तापनि लेखनप्रक्रियालाई खासै महत्त्व नदिने स्वभाव आजसम्म पनि देख्न सकिन्छ तर युगानुकूल बन्दै अधिकांश विद्वान्हरू पठन-पाठन र लेखन, प्रकाशनलाई पनि उत्तिकै महत्त्व दिन थालेका छन्। हाम्रो जस्तो आस्तिक जनसमुदायको बाहुल्य भएको देवभूमि नेपालको धार्मिक महिमा गान गर्ने हिमवत्खण्डले परिष्कृत स्वरूप पहिल्यै प्राप्त गर्नुपर्ने हो र जनजनको द्वारमा पुग्नुपर्ने हो तर त्यो हुन सकेन। पहिला नै यसको परिष्कृत रूप समाजले पाएको भए र यसलाई आधार बनाएर विभिन्न धार्मिक, सांस्कृतिक रचनाहरू प्रकाशित भएका भए विभिन्न धार्मिक स्थलहरूको महत्त्व प्रकाशमा आउने थिए र नेपालका विभिन्न तीर्थस्थलहरूले खण्डहर बन्नुपर्ने थिएन। नदीले केवल मलमूत्र बगाउन पर्ने थिएन। तीर्थयात्राको नाममा आफ्नो पसिनाको कमाई तिरस्कृत र अपमानित हुँदै अरूलाई समर्पण गर्नुपर्ने थिएन।

नेपालको महिमालय हिमालयको पौराणिक महत्त्व बखान गर्ने हिमवत्खण्डको सम्पादन गरी नेपाली समाज समक्ष प्रस्तुत गर्ने पहिलो श्रेय योगी नरहरिनाथलाई दिनुपर्छ। उहाँको नेतृत्व र विभिन्न विद्वान्हरूको सहयोगमा वि. सं. २०१३ मा सानुवाद प्रकाशन भएको पाइन्छ। त्यसपछि यो अमूल्य ग्रन्थरत्नको संशोधन, सम्पादन वा प्रकाशन गर्ने कार्य कतैबाट भएको देखिँदैन। तर, त्यो संस्करणको मूल संस्कृत श्लोकहरू अति नै अशुद्धिले भरिएका र अनुवादकमा कतिपय स्वनामधन्य विद्वान् गुरुवरहरूको नाम देखिए तापनि संशोधनमा ध्यान दिइएको देखिँदैन।

६. सम्पादित हिमवत्खण्डको महत्त्व

नेपालको धार्मिक, सांस्कृतिक, भौगोलिक, ऐतिहासिक महत्त्व प्रकाशित गर्ने हिमवत्खण्ड आफैँमा गुणगणगरिष्ठ र विषयगरिष्ठ पुराणवाङ्मय हो। योगी नरहरिनाथको नेतृत्वमा सानुवाद प्रकाशित भएको संस्करण दुर्लभ भएको र सो संस्करणमा भएका त्रुटिहरूलाई परिमार्जन गरी शुद्ध रूपमा सम्पादन गरेर प्रकाशमा ल्याउने काम श्रद्धेय गुरुवर प्रा. डा. वेणीमाधव ढकालबाट भएको छ। योगीजी बाहेक पछिका कुनै पनि नेपाली विद्वान्ले हिमवत्खण्डलाई खोतल्ने आँट नगरेको अवस्थामा अशुद्धिबहुल हिमवत्खण्डको गुरुवरले आफ्नो परिनिष्ठित श्रुति-सरस्वती-साधनाको फलस्वरूप पुनरुद्धार गर्नुभएको छ। पूर्वप्रकाशित संस्करणका संस्कृत श्लोकहरू व्यासकृत भन्न नै नसुहाउने सामान्य लिङ्ग, विभक्ति र वचनको समेत ख्याल नगरिएको स्वरूपलाई साहित्य-शास्त्रको आफ्नो असाधारण वैदुष्य र पौरस्त्य पुराणवाङ्मयप्रतिको श्रद्धाले अन्य पुराणको कोटिमा स्पर्धा गर्न सक्ने बनाउनु सम्पादक गुरुवरको तलस्पर्शी दृष्टि र संवेदनशीलाको प्रत्यक्ष प्रमाण हो। नेपालको धार्मिक, भौगोलिक महिमालाई उजागर गर्ने अन्य ग्रन्थहरू पशुपतिपुराण, नेपालमाहात्म्य, गण्डकीमाहात्म्य र तत्सम्बद्ध स्तुतिसाहित्यलाई समेत एकै स्थानमा समावेश गरिएकाले नेपालको धार्मिक, ऐतिहासिक महत्त्व एउटै पुस्तकले दिनसक्ने हुँदा यो संस्करणको उचाइ झन् बढेको छ। अतः नेपालस्थ तीर्थक्षेत्रहरूका गरिमामय महिमागान गरिएका विषयहरूका सर्वाङ्गीण स्वरूप अध्येताको सम्मुख प्रस्तुत गर्नु सम्पादित यस हिमवत्खण्डको विशेषता हो। संस्कृतका विद्वान्लाई पदैपिच्छे ठेस लाग्ने हिमवत्खण्ड यो सम्पादनबाट सहज, सरल र रुचिकर बनेको छ भने नेपालीमा अनुवाद भएकोले संस्कृत बुझ्न नसक्ने आम समुदायले नेपाली भाषाको माध्यमले हिमवत्खण्ड प्रतिपादित नेपालको महिमा बुझ्न सक्नेछन्।

७. स्तुत्य छ मनीषिमनीषा

संस्कृतवाङ्मयको अध्ययन, अध्यापन, लेखन, अनुसन्धानमा अनवरत लाग्नुभएका श्रद्धेय गुरुवर वेणीमाधव ढकालका कतिपय अमर कृतिहरू हाम्रा सामु आइसकेका छन्। सारस्वत-सपर्यामा नै आफ्ना दिनहरू सदुपयोग गर्दै आउनुभएका गुरुवरका अन्य उत्कृष्ट कृतिहरू पनि आउँदैछन्। वसुन्धराको शिरोभाग हिमालयको महिमामण्डित हिमवत्खण्डको सम्पादनमा गुरुवरको अनवरत परिश्रमले पुराणवाङ्मयमा नयाँ अध्याय थपेको छ। हामी परमुखापेक्षी हुनाले हामीसँग भएका बहुमूल्य निधिहरू त्यत्तिकै अलपत्र परेका छन्। अब त्यस्ता निधिको खोज-अनुसन्धान गरी समाजलाई सुसूचित बनाउनुपर्छ र लुकेर रहेका हाम्रा गौरवगाथाहरू विश्वसामु राख्नुपर्छ भन्ने पावन उद्देश्यले संस्कृतका असाधारण ग्रन्थहरूको व्याख्या विश्लेषण, टीकाटिप्पणी अनुवादका साथै संस्कृत भाषामा निबद्ध कतिपय समाजोपयोगी महत्त्वपूर्ण ग्रन्थहरूको प्रचारमा मनीषि-प्रवर गुरुवरको अनुभव-पक्व-प्रज्ञा सर्वथा श्लाघनीय छ र संस्कृतसेवीका लागि अनुकरणीय छ।

– उपप्रा. डा. रुद्रप्रसाद मिश्र
वाल्मीकि विद्यापीठ

# प्रस्तावना-खण्ड

## प्रथम परिच्छेद

# हिमवत्खण्डको परिचय एवं प्रकाशन

१.१ हिमवत्खण्डको परिचय

स्कन्दमहापुराण अनेकौं खण्डहरूमा विभक्त छ। तिनीहरूमध्येको एउटा खण्ड हिमवत्खण्ड हो जसमा १८८ अध्याय रहेका छन्। ती अध्यायहरूका धेरैजसो अनुष्टुप् छन्दका पद्यहरूमा हिमवत्खण्डका अत्यन्त महनीय विषयको प्रतिपादन गरिएको पाइन्छ। सबै अध्यायका श्लोकसंख्याको योग गर्दा यस खण्डमा १२ हजार ९ सय ६५ श्लोक रहेको देखिन्छ।

जम्बूद्वीपअन्तर्गत विशाल सुमेरुखण्डको बीचमा चाँदीझैं सेतो हिमशृङ्खला रहेको छ। त्यसमा कामाख्यादेखि वाराहक्षेत्र, कोशीक्षेत्र, नेपालक्षेत्र, पाशुपतक्षेत्र, गण्डकीक्षेत्र, गोसाईंकुण्ड, देवघाट, मुक्तिनाथ, मानसरोवर, केदार, बद्रीक्षेत्रअन्तर्गतका हिमचुली, पवित्र नदी, पवित्र कुण्डद्वारा शोभायमान भू–भागको वर्णनमा आधारित यो ग्रन्थ हिमवत्खण्डका नामबाट लोकमा प्रसिद्ध भएको छ। यस हिमवत्खण्डमा वाराहक्षेत्र, सप्तकोशी, सप्तगण्डकी, पाशुपतपुरी र नेपालमण्डलको व्यापक र हृदयस्पर्शी वर्णन गरिएको छ। नेपालमण्डलका चौसट्ठी शिवलिङ्गको वर्णनमा आधारित हिमवत्खण्डका ७० अध्यायमा समाविष्ट विषयले नेपालमण्डलको सर्वाधिक महत्त्व प्रमाणित गरेका छन्। समग्र हिमवत्खण्ड ग्रन्थमा शिवशक्तिको सामरस्य निरूपण प्रमुख प्रतिपाद्य विषय बनेर रहेको छ।

अर्कोतर्फ यसमा पवित्र नदीको स्रोत, दुर्लभ जडीबुटीको मुहान, ऋषिमुनिको तपोभूमि, वृक्षवनस्पतिका रमणीय उद्‌गमभूमि, आदिवासी जनजातिहरूको निवासभूमि र नेपाली हिमशिखरहरूको वर्णनका साथै तत्कालीन नेपालका स्थापत्यकला, धातुकला, मूर्तिनिर्माणकलाजस्ता अनकौं कलाकौशल प्रतिबिम्बित भएका छन्। यसमा पौराणिककालदेखि नेपालमा जनजाति र वर्णाश्रम धर्मका अनुयायी ब्राह्मण, क्षत्रिय आदि जातिको सौहार्दपूर्ण सह–अस्तित्वको इतिहास गुम्फन गरिएको छ।

नेपालका वाराहक्षेत्र, पाशुपतक्षेत्र, नेपालक्षेत्र, हरिहरक्षेत्र, मुक्तिक्षेत्रजस्ता महान् तीर्थ र नेपालसँग सटेका एवं कुनै समयमा नेपालभित्रै रहेका कामाख्याक्षेत्र, मानसरोवर, बद्रीनाथधाम, केदारक्षेत्रजस्ता नेपालीहरूका आस्थाका केन्द्रहरूका सम्बन्धमा पनि यस ग्रन्थमा उत्तिकै महत्त्वका साथ वर्णन गरिएको छ। यहाँ नेपालीहरूका व्रत, उपवास, पूजा–आराधना एवं सदाचारनिष्ठाको वर्णन गरी नेपालको प्राक्कालिक सांस्कृतिक धरातलको छविलाई पनि उजागर गरिएको छ। वर्णाश्रमधर्मका कट्टर अनुयायी ऋषिमुनि र राजाहरूको विभिन्न जनजातिहरूसँग वैवाहिक सम्बन्ध कायम भएको स्थिति दर्शाउने प्राच्य नेपालका घटनाहरूको निरूपण गरी त्यसबेला पनि नेपालमा स्वेच्छाविवाहको परम्परा रहेको तथ्य प्रतिपादन गरिएको छ।

यहाँ विभिन्न प्रसङ्गमा चर्चित ऋषि–मुनिहरूका तपस्या, ज्ञानप्राप्ति र वरदानप्राप्तिका घटनाहरूको निरूपण गर्ने प्रसङ्गमा हिमवत्खण्डको ४० औं अध्यायमा कुशिक ऋषिको, ४३ औं अध्यायमा गण्ड ऋषिको, रुद्रकेतु राजाको र कामप्रभा रानीको चित्रण गरिएको पाइन्छ। ५५ औं अध्यायमा मरीचि, अत्रि, पुलस्त्य, पुलह, ऋतु, भृगु, अङ्गिरा, वसिष्ठ, नारद, सनत्कुमार, सनातन, सनन्दन, सनत, कपिल, मनु, धौम्य, दक्ष, शक्ति, पराशर, वत्स, द्वितय, त्रितय, गालव, च्यवन, दुर्वासा, मार्कण्डेय, भारद्वाजजस्ता मुनिहरूको हिमवत्खण्ड नेपालमा उपस्थिति भएको कुरा बताइएको छ। यसबाट ती ती मुख्य ऋषिहरूका गोत्र र प्रवर धारण गर्ने वैदिक सनातन धर्मका अनुयायी हामी नेपालीहरू बाहिरबाट आएका होइनौं र यहाँकै आदिवासी हौं भन्ने तथ्य प्रमाणित भएको छ।

हिमवत्खण्डमा वर्णन गरिएका हजारौं पुण्यनदी, हिमशृङ्खला, पुण्यतीर्थ एवं कुण्डको महिमा प्रदर्शन गरिएबाट यो नेपालभूमि अनादिकालदेखि नै देवभूमि, तपोभूमि र पुण्यभूमिका रूपमा प्रसिद्ध भएको तथ्य प्रमाणित हुन्छ। यसमा नेपालमण्डलको जनजीवन र सामाजिक स्थितिको पनि चित्रण गरिएको छ। यहाँ किरात राजा र किराती जीवनशैलीका साथै लिच्छविप्रवेशको घटनाको पनि सङ्केत गरिएको छ।

यसमा नेपालमा मात्र पाइने विश्वमा दुर्लभ मानिएको शालग्रामशिलाको महत्त्व र भेदहरूको निरूपण गरिएको छ। सप्तकोशी र सप्तगण्डकीको उद्‌गम, महिमा तथा गोसाईंकुण्ड, देवघाट, वाराहक्षेत्र, चौसट्ठी लिङ्ग, मुक्तिनाथ, देवघाट, मानसरोवरसमेतको चित्रण गरी नेपालको प्राचीन भूगोलको यथार्थस्वरूप प्रकट गरिएको छ। यहाँ पशुपतिमन्दिर, गुह्येश्वरीमन्दिरका साथै अनेकौं मन्दिर एवं मूर्ति, लिङ्ग र दरबार आदिको चित्रण गरी कलासाधनाको उदयकालका चहकिला किरणहरूको प्रकाश प्रस्तुत गरिएको छ। श्रीकृष्णका छोरा प्रद्युम्नको नेपालकी छोरीका साथ विवाह, श्रीकृष्णको नेपालयात्रा, थुनिएकी वाग्मतीको निष्कासनजस्ता पुराणप्रतिपादित इतिहास पनि यहाँ व्यक्त भएका छन्।

हामी नेपाली विश्वको सबैभन्दा अग्लो हिमालका काखमा रहेका छौं। हाम्रो जीवनस्पन्दन, हाम्रो इतिहास, भूगोल, धर्म, संस्कृति र सामाजिक जीवनशैलीको रक्षा गर्ने रमणीय हिमालयको पश्चिम सागरदेखि पूर्वसागरसम्म अवस्थितिमध्ये मध्यखण्डको परिचय यस हिमवत्खण्डले दिएको छ। यसमा सगरमाथा, अन्नपूर्णा, माछापुच्छ्रे र धवलागिरिको अनुपम ऐश्वर्य पस्किइएको छ। साथै हिमाली जीवजन्तु, पशुपक्षी, वृक्षवनस्पति, धातु, धर्म एवं आस्थाको सजीव चित्रण गरिएको पाइन्छ।

उक्त सन्दर्भहरूकै आधारमा योगी नरहरिनाथ भन्नुहुन्छ– यो हिमवत्खण्ड १८ महापुराणमध्ये विशाल स्कन्दपुराणको मेरुखण्डअन्तर्गतको खण्ड हो। यसमा सर्वोच्च शिखरले सुहाएको विश्वका जिज्ञासु पर्यटकहरूको लागि अनुशीलनका विषय रहेका छन् र विश्वविख्यात हिमालयको पौराणिक इतिहास एवं भूगोल छ। यसमा तीर्थयात्रीका लागि तीर्थ छन्। पौराणिकहरूका लागि पुराण छ। भौगोलिकहरूका लागि भूगोल छ।

तीर्थयात्रा सदाचार, व्रत, देवदेवीको उपासना, सुपात्रमा दान र आत्मचिन्तनमा आधारित दर्शनको वर्णनका साथै शिव र शक्तिको आराधनाका अमोघ फलदायक दृष्यन्तहरू यहाँ प्रस्तुत गरिएका छन्। यी दृष्यन्तका माध्यमबाट समस्त देवताहरूमध्ये शक्ति र शिवको सर्वाधिक आराधनीयता प्रस्तुत गरी शिव र शक्तिद्वारा परिपालित राष्ट्रका रूपमा नेपाललाई चिनाउने काम भएको छ।

हिमवत्खण्डको अन्तिम अध्यायमा यस खण्डमा वर्णित विषयको संसूचन गर्दै भनिएको छ–

इत्येव कथितस्तुभ्यं प्रद्युम्नविजयो मुने। नेपालस्य च माहात्म्यं जानीहि त्वं तथा मुने॥
कौशिकीनां गण्डकीनामन्यासां सरितामपि। क्षेत्राणाञ्चैव तीर्थानां माहात्म्यं वर्णितं मया॥
बद्रिकाश्रमशैलस्य केदारस्य तथा मुने। श्रीगह्वरस्य गङ्गाया माहात्म्यं च तथाविधम्॥
व्यासाश्रमस्य माहात्म्यं हिमेशगह्वरस्य च। महिमा मानःसरसो बुद्धाश्रमस्य कुम्भज॥
हिमवत्सदृशं पुण्यं तपःस्थानं घटोद्भव। नास्ति नास्ति रसामध्ये चतुर्व्वर्ग्गफलप्रदम्॥

(हि.ख. ६।१८८।२०-२४)

निष्कर्षमा भन्नुपर्दा नेपाल देशको प्राचीनकालको सौन्दर्य र दिव्य आध्यात्मिक साधनाका साथै हजारौं शिवलिङ्ग, हजारौं तीर्थ र हजारौं पुण्यनदीका विशेषता व्यक्त गरी नेपाललाई भौतिक कैलासका रूपमा चित्रण गरिएको छ।

योगी नरहरिनाथज्यूको सत्प्रयासबाट विश्वसमक्ष उदाएको हिमवत्खण्डनामक पौराणिक ग्रन्थले नेपाल र नेपालीहरूको शिर उँचो गराएको छ। हामीले हिमवत्खण्ड प्रकाशनका प्रथम अभियन्ता योगीजी र उहाँका सहयोगीहरूप्रति कृतज्ञता व्यक्त गर्नुपर्दछ।

### हिमवत्खण्डको रचना

यसै प्रसङ्गमा हिमवत्खण्डको रचना कहिले र कहाँ भन्ने प्रश्न उठ्नु स्वाभाविक हो। हामी पुराणहरूका रचनाकार भगवान् वेदव्यासलाई मान्दछौं। तदनुसार हिमवत्खण्डको रचना द्वापरको अन्त्यमा र कलियुगको आरम्भमा भएको मान्नुपर्दछ। यो हिमवत्खण्ड विशाल स्कन्दमहापुराण अन्तर्गतको एउटा खण्ड भएकाले र यो हिमवत्खण्डग्रन्थ विशाल भारतवर्षमा कहीं पनि नपाइने हुँदा अरू कसैको रचना हो कि भन्ने शङ्का पनि हुन सक्छ तर हाम्रा प्राचीन वाङ्मयका धेरै ग्रन्थ नेपालमा मात्र प्राप्त भई भारत र युरोपमा पुगेका हुन्। तसर्थ मुस्लिम आक्रमणका कारण धेरै दुर्लभ ग्रन्थहरू नेपालमा भित्र्याइए र भारतमा रहेनन्। त्यसले गर्दा हिमवत्खण्डग्रन्थ नेपालमा मात्र रहेको हुनुपर्छ।

फेरि भारतीय प्रकाशक र विद्वान्हरूको नेपालका प्रति कहीं कतै सङ्कीर्ण दृष्टि हुने गर्दछ। उनीहरू नेपालपरक सामग्रीलाई मूल ग्रन्थबाट छुट्याउन पनि पछि पर्दैनन्। त्यसैले स्कन्दमहापुराणका दुई खण्ड हिमवत्खण्ड एवं अम्बिकाखण्ड नेपालपरक भएकाले भारतमा प्रकाशित भएनन्। पछि आएर नेपाली विद्वान्हरूको सत्प्रयासबाट यी दुबै ग्रन्थ नेपालमा प्रकाशित भए। महाकालको साम्राज्यमा आक्रान्ताहरूबाट, खण्डप्रलयबाट, भूकम्प आदि प्राकृतिक प्रकोपबाट पनि धेरै सामग्री लुप्त भए। त्यसैले यो ग्रन्थ भारतमा नपाइएको हुनसक्छ।

आधुनिक दृष्टिका विद्वान्हरू भने यसलाई मल्लकालको प्रारम्भमा राष्ट्रप्रेमी नेपाली विद्वान्हरूले मेची–महाकालीभित्रको हिमालको यात्रा गरेर सम्पूर्ण भूगोलको मूल्याङ्कन गरी नेपाल आमाको गौरव बढाउने हेतुले यो ग्रन्थ तयार गरिएको अनुमान गर्दछन्। त्यसैले यसका कतिपय अध्यायमा आधुनिक दृष्टि पनि पाइन्छ। यहाँ श्लोकहरूको रचना एकै किसिमको छैन। कतिपय विद्वान्हरूले यसको रचना आरम्भ गरे र परवर्ती विद्वान्हरूले त्यसको परिपूर्ति गर्दै गए। त्यसैले यहाँ रचनाहरूमा पनि स्तर फरक परेको देखिन्छ भन्ने उनीहरूको अभिमत छ।

यसरी दुईथरी मत प्राप्त भए पनि स्वयं वेदव्यासले 'पुराणहरू थपिँदै जाने विषय हुन्' भन्नुभएकाले स्कन्दमहापुराणमा अल्पसंख्यामा रहेका श्लोकहरूलाई परवर्ती नेपाली विद्वान्हरूले थपेको हुनसक्ने सम्भावनालाई नकार्न सकिँदैन।

हिमवत्खण्ड स्कन्दमहापुराणको एउटा खण्ड भएकाले यसमा अरू पुराणहरूमा झैं पौराणिक शैलीमा विषयवस्तुको वर्णन गरिएको छ। यस पुराणखण्डका वक्ता शिवपुत्र स्वामी कुमार हुनुहुन्छ र महर्षि अगस्त्य श्रोता हुनुहुन्छ। प्राथमिक चरणमा नैमिषारण्यका शौनक आदि ८८ हजार ऋषि श्रोता बनेका छन् भने वक्ता पौराणिक सूतजी हुनुहुन्छ। यसै संवादको पृष्ठभूमिमा अगस्त्य र कुमारको संवादलाई उभ्याइएको छ। ग्रन्थको बीचबीचमा कथाको अपेक्षाअनुसार अरू धेरै वक्ता–श्रोता रहे पनि ती सबै अगस्त्य र कुमारको संवादभित्रै गतार्थ हुन्छन्।

अन्तमा, प्रतिलिपि–लेखकहरूबाट हुनगएका कमी/कमजोरी र हतार हतारमा प्रथम सम्पादन गरिएका कारण पूर्वप्रकाशित हिमवत्खण्डको सौन्दर्य खरानीले बलेको अङ्गारझैं ढाकिएकोमा यहाँ यस ग्रन्थको अभिनव सम्पादन र समग्र विषयको अर्थप्रकाशनबाट यसका आन्तरिक विषय व्यवस्थित रूपमा समेटिई सरलतापूर्वक प्रस्तुत गरिएकाले सर्वसंवेद्य हुने कुरामा विश्वस्त हुन सकिन्छ।

## १.२ स्कन्दपुराणको एउटा खण्ड– हिमवत्खण्ड

स्कन्दपुराण दुई किसिमको छ– एउटा स्कन्दमहापुराण र अर्को स्कन्दोपपुराण। ब्रह्मवैवर्तमहापुराण कृष्णजन्मखण्डको १३२ औं अध्याय र बृहन्नारदीयपुराणमा महापुराणको संख्या बताइएको छ। त्यहाँ–

स्कन्दाह्वयाः तत्र सप्त खण्डाः सप्तैव परिकल्पिताः। एकाशीतिसहस्रन्तु स्कान्दं सर्वाधिकं तथा॥

यसबाट ८१ हजार श्लोकसहितको स्कन्दमहापुराणअन्तर्गत सातवटा खण्डहरू रहेको पुष्टि हुन्छ।

माहेश्वरो वैष्णवब्रह्मकाश्यस्त्ववन्तिका नागरमत्र षष्ठम्।
प्राभासिको विप्रवरेण खण्डाः स्कान्दे पुराणे कथिताः सुपुण्याः॥

यस भनाइबाट माहेश्वरखण्ड, वैष्णवखण्ड, ब्रह्मखण्ड, काशीखण्ड, अवन्तीखण्ड, नागरखण्ड र प्रभासखण्ड गरी स्कन्दपुराणका सात खण्ड रहेको तथ्य प्रकाशित हुन्छ। यो वर्णन स्कन्दमहापुराणको हो भन्ने समेत सिद्ध हुन्छ। तर, माथि लेखिएका सात खण्डका अतिरिक्त केदारखण्ड, उत्कलखण्ड, ब्रह्मोत्तरखण्ड र रेवाखण्ड पनि स्कन्दमहापुराणका खण्डकै रूपमा प्रसिद्ध छन्। यीभन्दा अतिरिक्त अरू खण्ड पनि स्कन्दमहापुराणकै खण्डका रूपमा प्रसिद्ध छन्। यसो हुँदा स्कन्दमहापुराणका प्रकाशित खण्डमात्र अङ्ग हुन् वा अरू पनि अप्रकाशित खण्ड हुन सक्छन् यसबारे गम्भीर आलोडन भएको देखिँदैन। स्कन्दमहापुराणका अतिरिक्त एक स्कन्दोपपुराण रहेको तथ्यबारे चर्चा गरिसकिएको छ। यस सम्बन्धमा शङ्करसंहिताको हालास्यमाहात्म्यमा बताइएको छ–

स्कान्दमद्यापि वक्ष्यामि पुराणं श्रुतिसम्मतम्। षड्विधं संहिताभेदैः पञ्चाशतखण्डमण्डितम्॥

यस भनाइबाट स्कन्दोपपुराणमा ६ संहिता र ५० खण्ड रहेको तथ्य स्पष्ट हुन्छ। फेरि कालिकाखण्डको अनुक्रमणिकामा–

स्कान्दमेतल्लक्षमानं स्कन्दो यत् कथयत् पुरा॥

भनेर स्कान्द उपपुराणमा १ लाख श्लोक रहेको तथ्य स्पष्ट गरिएको छ। फेरि स्कान्द उपपुराणमा ६ संहिता क्रमशः सनत्कुमार कुमारसंहिता, सूतसंहिता, शङ्करसंहिता, वैष्णवीसंहिता, ब्रह्मसंहिता र सौरसंहिता रहेको तथ्य गरुडपुराणको २२७ औं अध्यायमा बताइएको छ। पुनश्च स्कान्द उपपुराणअन्तर्गत सनत्कुमारसंहिताको कालिकाखण्डको पहिलो अध्यायमा खण्ड र काण्ड गरी ५० खण्डको चर्चा गरिएको छ। त्यसअनुसार ती खण्ड र काण्डहरू निम्नलिखित रहेका छन्–

क्षेत्रज्ञखण्ड, तीर्थखण्ड, काशीखण्ड, सह्याद्रिखण्ड, हिमालयखण्ड, बिन्धयाचलखण्ड, मोक्षखण्ड, प्रभासखण्ड, पुष्करखण्ड, नागरखण्ड, नर्मदाखण्ड, शैलखण्ड, अवन्तीखण्ड, गौरीखण्ड, कुरुक्षेत्रखण्ड, केदारखण्ड, हरिद्वारखण्ड, सेतुमाहात्म्यखण्ड, कालिकाखण्ड, तत्त्वोपाख्यानखण्ड, नदीखण्ड, धर्मखण्ड, ज्ञानयोगखण्ड, मुक्तिखण्ड, वैष्णवखण्ड,

उपवीतखण्ड, स्वरखण्ड, गङ्गासागरखण्ड, सागरखण्ड, वेदसागरखण्ड, सिद्धखण्ड, प्रमेयखण्ड, कुमारखण्ड, प्रायश्चित्तखण्ड, कालिकाखण्ड, सम्भवकाण्ड, युद्धकाण्ड, दक्षकाण्ड र उपदेशकाण्ड।

यसरी संहिता, काण्ड र खण्डहरूका श्लोकहरूको योग गर्दा स्कान्द उपपुराण १ लाख श्लोकसंख्यायुक्त देखिन्छ।

तर, ८१ हजार श्लोकसंख्याको हाल प्रकाशित रूपमा उपलब्ध स्कन्दमहापुराण भने परिपूर्ण छैन । त्यसैले स्कन्दमहापुराणका नामबाट प्रसिद्ध भएका केही प्रकाशित र केही अप्रकाशित १३ खण्डलाई पनि समावेश गर्दा स्कन्दमहापुराण परिपूर्ण हुने तथ्य अनुसन्धाता प्रा. बाबुराम पोखेलद्वारा स्पष्ट गरिएको छ। ती १३ खण्ड यसप्रकार छन्–

मेरुखण्ड, हिमवत्खण्ड, काश्मीरखण्ड, काशीखण्ड, कामाद्रिखण्ड, त्रिगर्तखण्ड, केदारखण्ड, कूर्माद्रिखण्ड, सरयूखण्ड, ब्रह्मपुत्रखण्ड, कामाक्षाखण्ड, मानसखण्ड र अम्बिकाखण्ड।

उपर्युक्त १३ खण्डमध्ये प्रस्तुत हिमवत्खण्ड योगी नरहरिनाथको प्रयासबाट गोरक्षटिल्ला काशीबाट प्रकाशित भएको छ । काश्मीरखण्ड र कामाद्रिखण्ड, हरिहरपुर, गुलेर, काँगडाबाट प्रकाशित भएका छन् । कूर्माद्रिखण्ड सरस्वतीभवन काशीबाट प्रकाशित भएको छ। अम्बिकाखण्ड संस्कृत अध्ययन संस्थान त्रिभुवन विश्वविद्यालयबाट प्रकाशित भएको छ। कामाख्याखण्ड र ब्रह्मपुत्रखण्ड आसामी भाषामा अनुवाद गरी आसामबाट प्रकाशित भएका छन् भन्ने कुरा सुन्नमा आएको छ।

उत्तराखण्ड गढवालका इतिहासकार हरिकृष्ण रतूडीले गढवालका इतिहास नामक ग्रन्थमा हिमालयका नेपालखण्ड आदि ५ खण्डको चर्चा गर्दै भनेका छन्–

खण्डाः पञ्च हिमालयस्य कथिताः नेपालकूर्माचलौ।
केदारोऽथ जलन्धरोऽथ रुचिरः काश्मीरसंज्ञोऽन्तिमः ॥

हामी नेपालमा प्राप्त र योगीजीद्वारा प्रकाशित जुन हिमवत्खण्डको चर्चा गरिरहेका छौँ त्यसमा वर्णित वराहक्षेत्रको चर्चा महाभारत वनपर्वको ८३ औं अध्यायमा, ब्रह्मपुराणको १२१ औं अध्यायमा र कूर्मपुराणको ४१ औं अध्यायमा पनि पाइन्छ। स्कन्दपुराणकै काश्मीरखण्डमा नेपालको वर्णनका साथै नेपालमा पाइने बाणलिङ्गको चर्चा गरिएको छ। स्कन्दपुराणको काशीखण्ड आदिको भाषाशैली र हिमवत्खण्डको भाषाशैलीमा पनि पर्याप्त समानता पाइन्छ । हिमवत्खण्डको प्राचीन पाण्डुलिपिमा श्रीस्कन्दमहापुराणे हिमवत्खण्डे भनी स्पष्ट लेखिएको पाइन्छ। यी सबै कुराको पर्यालोचन गरी राजेश्वर शास्त्री द्राविड, शेषराज रेग्मी, विश्वनाथ दातार, सोमनाथ सिग्देल, बुद्धिसागर पराजुली आदि विद्वान्हरूले हिमवत्खण्डलाई स्कन्दमहापुराणकै एउटा खण्ड मानेका छन्। यी सबै प्रमाण र उक्तिको आधारमा हिमवत्खण्डलाई स्कन्दमहापुराणको एउटा खण्ड मान्ने कुरामा कुनै द्विविधा हुँदैन।[1]

## १.३ हिमवत्खण्डको प्रथम प्रकाशनका कर्मसहयोगी वर्ग

योगीजीले आफ्नो अथक प्रयासबाट हिमवत्खण्ड हस्तगत गर्नुभएपछि त्यसको प्रकाशनका लागि अनेकौं विद्यानुरागी र राष्ट्रप्रेमी महानुभावहरूको सहयोग प्राप्त गर्नुभयो । प्रतिलिपि विधान सञ्चारप्रेषण, परिशिष्ट सङ्ग्रह, संशोधन, मुद्रण, प्रकाशनमा उहाँले देशदेशान्तरका महानुभावहरूका साथै स्वराष्ट्रका विद्वान् एवं भक्तहरूको सहयोगबाट हिमवत्खण्डलाई यस रूपमा प्रकाशन गर्नुभएको हो। ती सहयोगीहरूमध्ये चौतारा हरिजङ्ग शाह– बाहुनगाउँ दुल्लु, पं. भैरवप्रसाद पौड्याल– मैजुबहाल, पं. देवीनाथ योगी– मृगस्थली, गोरक्षपीठ, पं. घनश्याम पौड्याल– कास्की, पोखरा, पीरधारिनाथ योगी– पादुकाज्वाला, दुल्लु, मु. अनङ्गनाथ पौड्याल– कुमारीगाल, पं. पद्मनाभकेशरी अर्ज्याल– काठमाडौँ, पं. कृष्णप्रसाद भट्ट– ठिमी, बालकुमारी, मु. गोविन्दहरिजङ्गम– भक्तपुर, भैरवनाथ, कर्मवीरमहामण्डलका स्वयंसेवकहरू, धर्मरक्षामहामण्डलका सदस्यहरू, इतिहासप्रकाशमण्डलका सदस्यहरू, योगप्रचारिणी महासभाका सदस्यहरू, पीर चन्द्रनाथ योगी– मृगस्थली, गोरक्षपीठ, पं. शक्तिनन्दन राजोपाध्याय– मानगृह, पटकोटेल, पं. महेन्द्रप्रसाद पौड्याल– इलाम, पाँचथर वर्देन, प्रो. तोत्रराज पाँडे– काठमाडौँ, प्यूषाटेल, पं. यज्ञानन्द वज्राचार्य, ललितपुर, पं. उदयचन्द्र भण्डारी– रिनाक, सिक्किम, पं. कृष्णप्रसाद भट्टराई, पं. बुद्धिसागर पराजुली– राजकीय पुस्तकालय घण्टाघर, काठमाडौँ, पं. पद्मप्रसाद भट्टराई– राजकीय संस्कृत महाविद्यालय, काठमाडौँ, पं. उमानाथ आचार्य– आयुर्वेदविद्यालय, काठमाडौँ, महानुभाव बदरीनाथ योगी– चौघेरा, दाङ, सिद्धरत्ननाथ मठ, पं. गोमतीप्रसाद मिश्र– गोरखपुर, देवरिया, ना.सु. भीमप्रसाद घिमिरे– गैरीधारा, हाँडिगाउँ, प्रा.मं. नियमनाथ योगी– फलावाङ्, चौ. सुन्दरप्रसाद साह– ज्ञानेश्वर, सु. प्रेमबहादुर लिम्बू– धनकुटा, मिकुलङ्नागी, पं. टीकाराम सापकोटा– लमजुङ, तार्काङ, सिन्दूरेचौर, पं. गोविन्दप्रसाद सुवेदी– लमजुङ, खुदीवेणी, वि. शान्तिनाथ योगी– गोरक्षटिल्ला, काशी, पं. प्रेमसागर घिमिरे– इलाम, तोरीबारी, वि. धनसिंहकुमार– दुल्लु, गमौडी एवं

मेची–महाकालीभन्दा पर सिक्किमसम्मका काशीवासी अरू अनेक छात्रहरूको पनि यसमा सहयोग छ। आजसम्म प्रकाशमा आउन नपाएको 'हिमवत्खण्ड' को प्रकाशनमा रानी जगदम्बादेवीको ठूलो सहयोग रहेको छ। साथै आर्थिक सहयोग दिलाउने कार्यमा पं. केदारमणि आ.दी. र पं. कमलमणि आ.दी.को भूमिका रहेको छ। श्री विश्वनाथप्रसाद यादव (भगतजी) ले मुद्रणमा सौहार्दपूर्वक तत्परता देखाउनुभएको थियो। यिनै उदारहृदयीहरूको सर्वात्मना सहयोगबाट यस पुस्तकको प्रकाशन हुन आएको हो।

नेपालमा रहेका हिमवत्खण्डका अनेकौं पाण्डुलिपिहरूको खोजी गरी सङ्कलन, सम्पादन, अनुवाद, मुद्रण एवं प्रकाशनजस्ता कार्य सम्पन्न गरेर वि.सं. २०१३ मा विश्वदुर्लभ नेपालपरक पवित्र, पौराणिक वाङ्मय हिमवत्खण्डग्रन्थ नेपालको गौरव बनेर उदाएको थियो। नेपालको पौराणिक, सांस्कृतिक, ऐतिहासिक, भौगोलिक, धार्मिक र सामाजिक पुरावृत्त प्रकाशित गर्ने यो ग्रन्थ समग्र राष्ट्रनुरागी नेपालीहरूको स्वाभिमान र राष्ट्राभिमानको मुहानका रूपमा अभिनन्दित भएको पनि हो।

योगीजीको आज्ञानुसार हिमवत्खण्डका केही अध्यायको नेपाली अनुवाद गर्ने अवसर प्राप्त गरेका काठमाडौं टङ्गाल निवासी पं. सोमनाथ घिमिरे व्यास भन्दछन्–

श्रीमत्स्कन्दपुराण खण्ड हिमवत् साहित्यको सागर,
ध्वाँसोमा रँगिँदै थियो स्तुति गर्‍यो खुसी गरायो हर।
विद्यावारिधितुल्यका नरहरी गोरक्षपीठेशले,
छापे तत्पर भै परिश्रम गरी द्यौ मान्यता लोकले ॥१॥
विद्या ज्ञान विचारको कमि थिएँ आज्ञा मिल्यो नाथको,
थोरै लेख भनेर, त्यो गरिदिएँ भाषा यही ग्रन्थको।
लेखेका त्रुटिबाट जे जति छुटेकोमा क्षमायाचना,
गर्दै अर्पित सोमनाथ घिमिरे टङ्गालको प्रार्थना ॥२॥

## १.४ वाग्देवताका अवतार योगी नरहरिनाथ

गुरु गोरखनाथका अवतार मानिने सरस्वतीका वरद्पुत्र, नेपाल आमाका सपूत, अविश्वसनीय, अद्भुत एवं विलक्षण शक्ति र प्रतिभाका धनी, अनुपम विद्वान् राष्ट्रवादी, राष्ट्रधर्म, राष्ट्रिय संस्कृति, राष्ट्रिय इतिहास, राष्ट्रको अस्मिताका लागि आजीवन खट्ने योगी नरहरिनाथजस्ता महामङ्गलमय चरित्रका धनी महामानव "न भूतो न भविष्यति" अर्थात् न भएका थिए, न त हुनेछन्। नेपाल र भारतमा गरी ६ सय ग्रन्थका रचयिता, १८ सय जति प्रकाशित र अप्रकाशित, निबन्ध एवं प्रबन्धका स्रष्ट्य योगीजी साँच्चिकै महायोगी हुनुहुन्थ्यो जसको ९ वर्षको अखण्ड प्रयासबाट हिमवत्खण्डजस्तो दुर्लभ ग्रन्थरत्न संसारका आँखासामु आयो। उहाँले ६४ भागसम्म तयार गर्नुभएको इतिहास–प्रकाशका ५ भागमात्र प्रकाशित हुन सके। उहाँले ९८ भागसम्म तयार गर्नुभएको सन्धिपत्र–सङ्ग्रहका ७ भागमात्र प्रकाशित हुन पाए। उहाँले १५ भागमा लेख्नुभएको शिखरिणीयात्राको जम्मा १ भाग मात्र प्रकाशित भयो। नेपालको इतिहासका लागि अभिलेख, सन्धिपत्रको सङ्ग्रह र शिखरिणी यात्राका लागि यायावर बनेर उहाँले समग्र जीवनको उत्सर्ग गर्नुभयो। जाँदाजाँदै नेपाल आमाको गौरव–गरिमा बढाएर बोध र सूचनाको अलङ्कारद्वारा नेपाल आमाको सोह्रशृङ्गार गर्नुभयो। उहाँले आफ्नी आमा र नेपाल आमाको कोखीको घाहा मेटाउनुभयो र आफू सदाका लागि अजर–अमर हुनुभयो। उहाँको कीर्तिपताका फहराइएको छ र फहराइरहनेछ।

योगी नरहरिनाथ वि.सं. १९७१ फागुन १७ गतेका दिन कर्णाली अञ्चलको कालीकोट जिल्लाको लालुगाउँमा माता गौरीदेवीको कोखबाट भारद्वाज गोत्रका पिता ललितसिंह थापाको सुपुत्रका रूपमा पैदा हुनुभयो। उहाँलाई बाल्यकालमा बलवीरसिंह भनिए पनि योगपट्टको दीक्षा लिएपछि योगी नरहरिनाथका नामबाट प्रसिद्ध हुनुभयो।

बालक बलवीर ४ वर्षको हुँदादेखि नै उहाँका अलौकिक चमत्कार देखा परे। ८ वर्षको उमेरमा उहाँको व्रतबन्ध भयो। ९ वर्षको उमेरमा उहाँ चौथान खलङ्गा वटुक भैरवनाथ चन्दननाथ भाषा पाठशालामा अध्ययनका लागि जानुभयो। त्यहाँ उहाँले आफ्नो जन्मजात सारस्वत प्रतिभाका कारण सबै सहपाठीहरूलाई उछिन्दै जानुभयो। १३ वर्षको उमेरमा भारतको उदयपुर राज्यमा पैदा भई काठमाडौं मृगस्थली गोरखनाथ मठमा महन्त पदमा आसीन योगी क्षिप्रानाथको पछि लागेर उहाँ काठमाडौं पुग्नुभयो। त्यहाँ गएपछि गुरु क्षिप्रानाथले १३ वर्षको बालकलाई नाथयोगपद्धतिमा दीक्षित गरे। मृगस्थलीमा रहेका योगीजी अध्ययन गर्न भनी हरिद्वार मायापुरीमा रहेको योगाश्रममा जानुभयो।

योगाश्रमको विद्यार्थीका रूपमा योगीजीले महाविद्यालयका संस्थापक महन्त पूर्णनाथ र महामहोपाध्याय द्रव्येश्वर झासँग व्याकरण एवं दर्शनविषयको गम्भीर अध्ययन गर्नुभयो। साहित्यशास्त्रका धुरन्धर विद्वान् ज्ञानीराम शास्त्रीसँग काव्यशास्त्र र व्याकरणशास्त्रको अध्ययन गर्नुभयो। वि.सं. १९९२/०९३ को अवधिमा विद्याकेन्द्र वाराणसीमा गई गोरक्षटिल्ला मैदागिनमा बसेर नाथसम्प्रदायका सुविख्यात विद्वान्, शास्त्रार्थमहारथी, योगी शङ्करनाथ फलेग्रहि र सुविख्यात महामहोपाध्याय हरिहर कृपालुसँग सम्पूर्ण सिद्धान्तकौमुदी, महाभाष्य प्रथमाह्निक र वाक्यपदीय ब्रह्मकाण्डको अध्ययन गर्नुभएको थियो।

वाराणसी निवासपछि उहाँले साधुसमाजका साथ तत्कालीन पन्जाबअन्तर्गत लाहौर (हालको पाकिस्तान) पुगेपछि पनि अध्ययनलाई कायमै राख्नुभयो। लाहौर संस्कृत कलेजका प्राचार्य महामहोपाध्याय माधव भण्डारी र केशवदेव गौंडसँग मम्मटको काव्यप्रकाश र बाणभट्टको कादम्बरी अध्ययन गर्नुभयो। यसरी अध्ययन गर्दै जाँदा उहाँले सरस्वती संस्कृत महाविद्यालय लुधियानाबाट शास्त्री परीक्षा उत्तीर्ण गर्नुभयो। त्यहाँ रहँदा प्राचार्य विश्वनाथ प्रभाकरबाट साहित्य एवं षड्दर्शनको आमूलचूड अध्ययन गर्नुभयो। त्यसबेला योगीजीमा विद्यासंस्कारको चरम चुली देखा पऱ्यो। शास्त्रार्थ, कवितारचना र निबन्धलेखनका प्रतिस्पर्धाहरूमा उहाँ सर्वप्रथम हुँदै जानुभयो। त्यस अवसरमा योगीजीको प्रतिभा पश्चिमोत्तर भारतमा चर्चा र प्रसिद्धिको विषय बनेको थियो।

योगीजी विद्याको अनुशीलनबाट अघाउनुभएन। उहाँ फेरि वैदिक वाङ्मयको अध्ययनका लागि तड्पिएर हरिद्वार आइपुग्नुभयो र गुरुकुल काँगडी विश्वविद्यालय हरिद्वारमा आर्यसमाजका प्रसिद्ध विद्वान् जयदेवसँग अध्ययन गरी ऋग्वेद, यजुर्वेद, सामवेद र अथर्ववेदका चारवटै संहितामा सर्वश्रेष्ठ छात्र घोषित हुनुभयो।

उहाँले शतपथब्राह्मण, तैत्तिरीयब्राह्मण, ऐतरेयब्राह्मण, ताण्ड्यब्राह्मण, गोपथब्राह्मण, सुमेधाब्राह्मण र वैकलेयब्राह्मणको अध्ययन गर्नुभयो। वेदार्थज्ञानका लागि आवश्यक निघण्टु, निरुक्त र प्रातिशाख्यको अध्ययन उहाँले प्रारम्भिक चरणमै गरिसक्नुभएको थियो। यसरी वेदको सर्वाङ्गीण अध्ययन गरेपछि उहाँले गुरुकुल काँगडीबाट वेदालङ्कार परीक्षा उत्तीर्ण गर्नुभयो। यो उपाधि पाएपछि पनि उहाँलाई सन्तोष भएन। उहाँको अध्ययनको क्रम निरन्तर अगाडि बढ्यो र आजीवन उहाँ विद्यार्थीकै रूपमा रहनुभयो।

आफू नाथसम्प्रदायमा दीक्षित भएकाले उहाँले आजीवन ब्रह्मचारी नै रहेर शैवागमको अध्ययन गर्नुभयो। हरिद्वारको अध्ययनपरम्परा पूरा गरेपछि उहाँ रावलपिण्डी (पाकिस्तान) मा मोतीनाथ संस्कृत विश्वविद्यालय, जम्बूकाश्मीरमा स्थित रघुनाथ संस्कृत कलेजको पुस्तकालयका साथै मुल्तान र पेशावरका पुस्तकालयहरूमा हस्तलिखित शैवागमको गहन अध्ययन गर्नुभयो। त्यसपछि गोरखनाथसम्प्रदायको श्रीवृद्धिका लागि कठिन साधना गर्दै साना/ठूला पुस्तक रचना गरी प्रकाशन र वितरणमा पनि उहाँ खट्दै जानुभयो, लेख्दै जानुभयो र गम्भीर मनन गर्दै जानुभयो। पूरा भारतवर्षमा शास्त्र र सम्प्रदायको प्रचारप्रसार गर्दै जानुभयो। उहाँ ॐकारपरिवारको एकता बुझाउन र धर्म, संस्कृतिको रक्षा गर्न कटिबद्ध हुनुभयो। जीव, ब्रह्म, प्रकृति, जगत् र मोक्षको विषयमा शिवगोरक्ष शैवागमको विशेष अध्ययन एवं अनुसन्धानमा जुट्नुभयो। पूरा भारतवर्षमा घुमेर उहाँले संस्कृति, धर्म र अध्यात्मको प्रचार गर्दै ख्यातनामा पुस्तकालयहरूमा पुगेर रत्नहरूको दोहन गर्दै जानुभयो।

भारतमा त्यसबेला स्वतन्त्रताको युद्ध चलिरहेको थियो। भारतीय उच्चस्तरीय नेताहरूका साथ उहाँ रावलपिण्डी, लाहौर, मुल्तान, सिन्ध, पन्जाब, कलकत्ता र दिल्लीका कारागारमा पटक पटक थुनिनुभयो। उहाँले भारतीय स्वतन्त्रता–सङ्ग्राममा विद्यार्थीका तर्फबाट गरिने आन्दोलनको अगुवा भएर जुन भूमिका निर्वाह गर्नुभयो त्यो कहिल्यै पनि भारतीयहरूका लागि चर्चाको विषय बन्न सकेन। उहाँले भारतीय स्वतन्त्रता सेनानीलाई दिइने आर्थिक सह्योग र सम्मानसमेत लिनुभएन र नेपालआमाको सेवा र शृङ्गारका लागि नेपालमा प्रवेश गर्नुभयो। यहाँ आएपछि उहाँको अदम्य उत्साही व्यक्तित्व, तीव्र राष्ट्रप्रेम, अलौकिक आध्यात्मिक शक्ति र निर्मल सारस्वत वाग्धाराका सामु राजा, महाराजा, मन्त्री, उच्चपदस्थ अधिकारी, विशिष्ट नागरिक र सर्वसाधारण नतमस्तक भए।

धुनीमा रमाउने, खरानी घस्ने, गाँजा तान्ने र घरघरमा मागी खाने जोगीहरूभन्दा उहाँ फरक हुनुहुन्थ्यो। नेपाल, हिमाल, माल र हिमाली जनताको गौरव–गरिमा वृद्धि गर्न कम्मर कसेर उहाँ नेपालको इतिहासको खोजीमा लाग्नुभयो। लेख्दै र इतिहासका ठूला ठेली तयार गर्दै जानुभयो। मेची र महाकालीको हिमाल, माल र तराईलाई आफ्नो खुट्टाले नाप्नुभयो। हिमालयमा पाइने हिमयतिको खोजी गर्नुभयो। सङ्कटमा पर्नुभयो, भोकै रहनुभयो, वन, जङ्गल, नदी छिचोल्दै चोर, डाँकु, जङ्गली जनावरसँग जुध्दै जानुभयो र पुरातात्त्विक रत्नहरूको खोजी गर्नुभयो। उहाँ खोजीका लागि सङ्घर्ष गरिरहँदा आफ्ना लुगा फाटेको पनि थाहा पाउनुहुन्नथ्यो। उहाँ पलपलको महत्त्व बुझेर एकछिन पनि खेर नफाल्ने स्वभावका हुनुहुन्थ्यो। आफ्नो एउटै मुखबाट संस्कृत, नेपाली र हिन्दीमा शास्त्रका रहस्य पालैपालो गुनगुनाउँदै क्रियाशील बन्नुहुन्थ्यो। बिहानी ब्राह्ममुहूर्तमा

जागेपछि उहाँ कापी–कलम हातमा लिएर आफ्ना रचना तिखार्न लाग्नुहुन्थ्यो। भेट्ने मानिस आएमा सबैलाई राष्ट्रका लागि केही गर्नुपर्छ भनी घण्टौं मार्गदर्शन गर्नुहुन्थ्यो। ती मानिस गएपछि फेरि कापी कलम समाउनुहुन्थ्यो। उहाँ बोल्दाको वचन संस्कृतको श्लोक बन्दथ्यो, नेपाली कविता बन्दथ्यो र हिन्दीको दोहा बन्दथ्यो। उहाँ अद्‌भुत हुनुहुन्थ्यो, अकल्पनीय हुनुहुन्थ्यो र अविश्वसनीय प्रतिभा र ज्ञानका पुञ्ज हुनुहुन्थ्यो। उहाँ सर्वजनहिताय र सर्वजनसुखायको सिद्धान्तलाई साकार तुल्याउन शरीर, आत्मा दुबै दृष्टिबाट राष्ट्रका लागि समर्पित हुनुहुन्थ्यो। उहाँभित्र ज्ञानको अथाह भण्डार थियो र साधनाको चमत्कार थियो। उहाँको कलमको टुप्पोमा सरस्वती खेल्थिन् र उहाँको अदम्य आत्माभित्र महर्षि पतञ्जलिका साथै गुरु गोरखनाथले वास गरेका थिए। उहाँभित्र लोकोपकार प्रवृत्तिका साथ आयुर्वेदका प्रवर्तक, धन्वन्तरि, चरक, सुश्रुत र वाग्भटले वास गरेका थिए। उहाँ जस्ता हुनुहुन्थ्यो र जे हुनुहुन्थ्यो अलौकिक हुनुहुन्थ्यो। उहाँ यायावरीमा लाग्ने एकोहोरो यायावर हुनुहुन्थ्यो। लेख्न लाग्दा एकोहोरो सारस्वत लेखक बन्नुहुन्थ्यो र प्रवचन र संवाद गर्न लाग्दा एकोहोरो प्रवक्ता बन्नुहुन्थ्यो। उहाँ जुन कर्ममा लाग्यो त्यसैमा गहिरिँदै जाने र रत्न झिक्ने स्वभावका हुनुहुन्थ्यो।

यसै क्रममा उहाँबाट सैकडौं कृतिरत्न रचिए। नेपालको इतिहास मूर्तिमान् भयो। नेपाली भूगोलका डाँडाकाँडा, रोचखोंच, गल्छीगौंडा, भञ्ज्याङ, मैदान र माल–हिमालले उहाँबाट पहिचान पाए। उहाँले हिमवत्खण्ड नामक ग्रन्थको खोजी गर्नुभयो, सङ्कलन गर्नुभयो, सम्पादन गर्नुभयो, अनुवाद गर्नुभयो र गर्न लगाउनुभयो। अनि त्यसको प्रकाशन गराई नेपाल आमाको मुहार हँसाउनुभयो र नेपालको हिमालयलाई टल्काउनुभयो।

नेपालको दाङक्षेत्रको बेलझुण्डीमा डेरा जमाई डटेर, खटेर, भूदानपद्धतिबाट जग्गा–जमिन जोडी नेपाल संस्कृत विश्वविद्यालयको दह्रिलो जग तयार गर्नुभयो। उहाँले दर्जनौं कोटिहोमको आयोजना गरी नेपालका तीर्थहरूलाई झनै पवित्र तुल्याउनुभयो। नेपाली नरनारीलाई विनाजातीय भेदभाव गायत्रीको आराधनामा प्रवृत्त गराई यज्ञसंस्कृतिको दिव्यपताका फहराउनुभयो। नेपालका हजारौं शिलालेख, ताम्रपत्र, भोजपत्र र दुर्लभ पाण्डुलिपिको खोजी गरी चाङ लगाउनुभयो। फलस्वरूप इतिहास–प्रकाशका ६४ भाग तयार भए। सन्धिपत्र–सङ्ग्रहका ९८ भाग रचिए र शिखरिणी–यात्राका १५ भाग तयार भए।

उहाँले धर्म, दर्शन, इतिहास संस्कृति र नियात्रासम्बन्धी साना ठूला हजारौं कृतिहरूको रचना गर्नुभयो। उहाँका ती रचनाहरूको लेखाजोखा गर्नु सम्भव छैन। उहाँ नेपाललाई दूषित राजनीतिबाट धमिलो हुन नदिन राजनीतिमा पनि देखिनुभयो। राजाले राम्रो काम गर्दा उहाँ राजाको नजिकमा पनि जानुभयो। राजाले नराम्रो काम गर्दा राजालाई पनि सिंहगर्जन गर्दै सावधान गराउनुभयो। उहाँ यस हिमाली राष्ट्रका सच्चा चाणक्य बन्नुभयो। उहाँको यो पाटो विवादास्पद मानिए तापनि यसमा राष्ट्र र राष्ट्रधर्मको रक्षा र विकासजस्ता महान् लक्ष्य रहेका थिए। उहाँलाई दलीय स्वार्थमा लागेका मानिसले बुझ्न सकेनन्। उहाँ स्वस्थ राजनीति, निर्मल धर्मनीति र पारदर्शी अध्यात्मनीतिका पक्षपाती हुनुहुन्थ्यो। उहाँको जस्तै उचाइ र व्यक्तित्वका मानिस नभएकाले नेपालले उहाँको महिमा र योगदानको राम्रो कदर गर्न सकेन। कहिलेकाहीं त उहाँलाई कारागारमा कोचेर यातना दिइयो, सताइयो, बिजुलीका करेण्ट लगाइयो। आज योगीजीलाई चरम पीडा दिएको फल राष्ट्रले नराम्ररी भोगिरहेको छ। आजको विद्रूप राजनीतिका कारण खग्रासमा परेका सबै नेपालीले देशको दुर्दशा हेर्दै बाँच्न परिरहेको छ।

यस्ता वाग्देवताका अवतार गुरु गोरखनाथका मूर्तरूप र नेपाली राजनीतिका चाणक्य योगी नरहरिनाथ वि.सं. २०५९ को फागुन महिनामा ८८ वर्षको उमेरमा हामीलाई छाडी ब्रह्मलीन हुनुभयो।

१.५ प्रथम सम्पादक योगी नरहरिनाथज्यूको सम्पादकीय एवं प्रकाशकीय

यो 'हिमवत्खण्ड' प्रकाशित गर्दा सम्पादनमा आदर्श पुस्तक, गोरक्षाधीश राष्ट्रपिता बडामहाराजा श्री ५ पृथ्वीनारायण शाहदेवका पुरोहित पण्डित चक्रपाणि अर्ज्यालका दुई प्रति हिमवत्खण्डका पाण्डुलिपि चक्रपाणिवंशज पण्डित पद्मनाभकेशरी अर्ज्यालका सौजन्यबाट प्राप्त भए। दुबैमा लेखनकालको उल्लेख छैन तापनि आकृति, प्रकृति, कागत–मसी र लिपिशैली हेर्दा आज (२०१३) देखि तीनसय वर्षअघि लेखिएका पुस्तक हुन्। यौटाको प्रथम पत्रको प्रथम पृष्ठमा– 'श्री .... केशरी पण्डित'– भन्ने अस्पष्ट ३ छाप र– 'श्रीपण्डितवर्यश्रीचक्रपाणिशर्मणः श्रीवैक्रमाब्दे १७९९'– भन्ने पछि अर्कै लिपि, अर्कै मसीमा अर्कै मानिसले लेखेको छ। मड्याएका हरिताल कागतका खुला पत्रमा लेखिएका यी दुवै पुस्तकमा पछि लेखिएका अरू पुस्तकहरूभन्दा पाठशुद्धि पनि छ। यौटामा विषयसूची पत्राङ्क ५१० छन्।

भक्तपुर ईंटाछेंयेलका पण्डित रामशरण झाको गोविन्दहरि जङ्गम र पं. कृष्णप्रसाद भट्टबाट हस्ते प्राप्त भएको अर्को पुस्तकको अन्तिम पुष्पिकामा यस्तो लेखिएको छ– '॥ समाप्तं शुभं॥ नेपाल सम्वत् ९०५, पौष वदि १४ मकरसंक्रान्ति तस्मिन्

दिने सम्पूर्णम् ॥'– भनेर लेखन समाप्ति भएका दिनको सूचना छ। ३०१ पत्रदेखि अगाडि अर्का लेखकले १३६ अध्याय लेख्ने ठाउँमा १३९ अध्याय लेखेर क्रमशः ४ अध्याय सङ्ख्या बढाउँदै लगेकाले यसमा १८९ अध्याय हुनगएका छन्। अरू प्रायः सबैमा १८५ अध्याय छन्। यसमा लिपि र लेखक तिनौटा छन्।

मु. अनङ्गनाथ पौड्यालका पुस्तकको अन्तमा यो छ– 'स्वस्ति श्रीसम्वत् १९४५ ॥ श्रीशाके सम्वत् १८१० ॥ श्री नेपाल सम्वत् १००९ साल मिति पौष शुदि १० शुक्रवार एतत्दिने इदम् श्रीहिमवत्खण्डपुराणपुस्तक लिखितं. श्रीललितापुरनगराधिवाशित। श्रीमहाबौद्धोपासक. श्रीमहेश्वरान्दिन. लिखितं समर्पितम् ॥शुभम्॥, यसका अतिरिक्त मु. अनङ्गनाथसँग प्रायः चारसय वर्ष अघिको अर्को मैथिलशैलीका लिपिमा हिमवत्खण्ड छ। तर १८४ अध्याय अगाडि अलिक पत्र खण्डित छन्। मानगृहाधिपति सिद्धिनर सिंहमल्लका पुरोहित विश्वनाथ उपाध्यायका सन्तान पं. शक्तिनन्दन राजोपाध्यायका घरको पुस्तकमा पनि १८५ अध्याय छन् र अन्तिम पुष्पिकामा– 'समाप्तश्चायं हिमवत्खण्डः ॥ शुभम् भूयात् ॥' भन्ने मात्र छ, संवत् छैन तापनि दुई सय वर्षअघिको लिपि छैन। ४६९ पत्र छन्। एवं अन्यान्य पूर्णापूर्ण अनेक प्रति छन्।

तर विवर्त हिमालयको यो पौराणिक, ऐतिहासिक र भौगोलिक बृहत् ग्रन्थ अद्यावधि प्रकाशमा नआएको हुनाले विश्वोन्नत हिमवान्को अविरल परिचय सबैले पाऊन् भनेर नौ वर्ष अघि (२००४) देखि प्रयत्न गरिएको हो। परन्तु–समय एव करोति बलाबलम्। अस्तु।

यो हिमवत्खण्ड–

ब्राह्मं पाद्मं वैष्णवं च शैवं भागवतं तथा। नारदीयं तथा मार्कण्डेयमाग्नेयमेव च ॥

भविष्यं ब्रह्मवैवर्तं लैङ्गं वाराहमेव च। स्कान्दं च वामनं, चैव कौर्मं मात्स्यं च गारुडम् ॥

ब्रह्माण्डं च क्रमादष्टादश द्वैपायनर्षिणा। प्रणीतानि पुराणानि श्रेयसे सन्तु सेविनाम् ॥

भनिएका अष्टदश पुराणमध्ये विशाल 'स्कन्दपुराण'का मेरुखण्डान्तरको खण्ड हो। यसमा विश्वोत्तुङ्ग विश्वकौतूहलवर्द्धक विश्वानुशीलनविषय र विश्वविख्यात हिमालयको पौराणिक इतिहास एवं भूगोल छ। यो तीर्थयात्रीका निमित्त माहात्म्य छ। पौराणिकका निमित्त पुराण छ। भौगोलिकका निमित्त भूगोलशास्त्र। ऐतिहासिकका निमित्त इतिहास छ र जनसाधारण जिज्ञासुका निमित्त परिचायक छ। ''हिमवत्खण्ड'सम्बद्ध कतिपय सामग्री परिशिष्टमा प्रकाशित छ। यस्ता अनन्त सामग्रीहरू छरिएका छन्।

अरू पौराणिक साहित्यझैं यसमा पनि अनेक समयका रचना देखिन्छन् र प्राचीन लिपिका प्रतिलिपि परम्पराले गर्दा अनेक स्थल दुरूह एवं अन्यथा पनि हुन गएका छन्। हतपतका प्रकाशनमा समयाभाव र सामयिक वस्तुस्थिति झल्काउन 'यादृशं पुस्तकं दृष्टं तादृशं लिखितं मया। यदि शुद्धमशुद्धं वा मम दोषो न विद्यते' भनाइ अनुसार अनेक प्रतिहरूमध्ये दिग्दर्शनार्थ अलिकति पाठभेद दिएर अरू यथासाध्य शुद्ध र विशिष्ट पाठ दिइएको छ। अन्य संस्करणमा विशेष अनुसन्धान एवं परिशोधन गर्नुपर्नेछ। पं. पद्मनाभकेशरी अर्ज्यालका दुई प्रति र मु. अनङ्गनाथ पौड्यालको एकप्रति राखेर पं. लोकराज सत्यालले यत्नपूर्वक प्रतिलिपि तयार गर्नुभयो। प्रारम्भिक कतिपय अध्यायको संवाद (रुजु) र पाठभेद सम्पादनमा, पं. पद्मप्रसाद, पं. कृष्णप्रसाद, पं. उमानाथ, पं. बुद्धिसागर, पं. घनश्याम योगी, देवीनाथ आदि विद्वान्हरूको सह्योग रहेको छ। परिशिष्टको अधिकांश सामग्री मु. अनङ्गनाथद्वारा प्राप्त भएको हो। एवं अनेक सज्जनहरूका सौजन्यपूर्ण सह्योगबाट यो अर्थसाध्य, श्रमसाध्य र समयसाध्य बृहत्तर कार्य सिद्ध भएको छ। यौटालाई वर्षदिन लाग्ने अनुवादकार्य अनेक विद्वान्हरूका महत्त्वपूर्ण विभाज्यकारिताले एकै मासमा पूर्ण हुन गएकाले भावी अध्येताहरूको बोधार्थ जतिजति अंश ज–जसका हातबाट अनूदित भएको छ, त्यो तत्तत् नामबाट प्रकाशित गरिएको छ। किनकि यसबाट 'संघे शक्तिः' भन्ने उखान प्रमाणित हुन्छ। एकता र क्रियाशीलताले गुरुतर कार्य पनि हलुका हुन जान्छ भन्ने कुरा सिद्ध हुन्छ। समसामयिक विविध व्यक्तिहरूका भाषा र लेखनशैलीमा कत्तिको अन्तर हुँदो रहेछ भन्ने दृष्टान्त पनि स्पष्ट हुन्छ।

नदी र कुण्ड सरोवर आदिका सान्निध्यले भएका हिमालयका कतिपय वर्तमान ऐतिहासिक स्थल देवताका तीर्थस्नान हुन्। ती यी हुन्– कामाख्या, सिद्धकाली, वराहक्षेत्र, परशुरामकुण्ड, भीमेश्वर, कुशेश्वर, जनकपुर, महिषमर्दिनी, पलाञ्चोक, स्फटिकेश्वर, इन्द्रेश्वर, त्रिवेणी, कैलाश–भालेश्वर–चण्डेश्वर, धनेश्वर साँगा भागवती, मणिचूडेश्वर फुलचोकी, कालेश्वर, नटरम्भेश्वर, दक्षिणकाली, टीकाभैरव, हरिसिद्धि, बुङ्मती बुङ्गदेव (मत्स्येन्द्र), जलविनायक, आदिनाथ, बाघभैरव, शिखरनारायण, विशङ्कुनारायण गोदावरी, सूर्यविनायक, सिद्धपोखरी, तलेजु, भैरवनाथ, दत्तात्रेय, वज्रयोगिनी, चाँगुनारायण, गोकर्णेश्वर सुन्दरी,वाग्द्वार, नीलकण्ठ, धूम्रवराह, टुँड्यलदेवी, चन्द्रविनायक, भगवान्थान, बौद्ध, गुह्येश्वरी, सिद्धेश्वर,

गोरक्षनाथ, किरातेश्वर, गौरीतीर्थ, पशुपतिनाथ, वासुकि, रुद्रागारेश्वर, वत्सला, वनकाली, भुवनेश्वर, जयवागीश्वरी, ब्रह्मा, आर्यातीर्थविरूपाक्ष, मृगेश्वर, पर्वतेश्वर, एकाननेश्वर, विराटेश्वर, राजेश्वरी, भण्डारेश्वर, चतुर्व्यूहनारायण, मानेश्वर–मानेश्वरी, ज्ञानेश्वर, बाणेश्वर, कूटेश्वर, शङ्खमूल, कुम्भेश्वर, मीननाथ, मत्स्येन्द्रनाथ, कृष्णमन्दिर, विश्वनाथ, तलेजु, महाबौद्ध, त्रिपुरेश्वर, कालमोचन, टेकुदोभान, भीमसेन काठमाडौं, काठेसिम्बु, इन्द्रेश्वर, कान्तीश्वर, लुमडी, जगन्नाथ, श्वेतमत्स्येन्द्र, महाकालभैरव, मैती, तुलजा, शुभाभगवती, स्वयम्भू, इचङ्गुनारायण, आदीश्वर, भृङ्गेश्वर, बालाज्यू, नन्दिकेश्वर, नक्शाल भगवती, ६४ लिङ्ग, ९ दुर्गा, ४ विनायक, ४ काली, ४ योगिनी, ४ कुमारी, ४ नारायण, ३ तलेजु, ३ बुद्ध, ३ पोखरी, २ मत्स्येन्द्र, शिवपुरी, नीलकण्ठ, भैरवी, जालपा, त्रिपुरसुन्दरी, मनःकामना, गोरक्षनाथ, कालिका, विन्ध्यवासिनी, मुक्तिनाथ, दामोदरकुण्ड, वेनी, देवघाट, हृषीकेश, सोमेश्वर, कङ्काली, हरिहर, पालपाभैरव, लुम्बिनी, कपिलवस्तु, देवीपाटन (पातालेश्वरीपीठ), रतनपुर सिद्धरत्ननाथ, रत्नेश्वर महादेव, स्वर्गद्वारी, श्रीग्राम सल्यान भैरव, वागीश्वरी, भुँवरभवानी, लाटीकोइली, काँक्रेविहार, देउतीमाता, डुँगेश्वर, कोटेश्वर, ललाटज्वाला, ठिङ्गाल, शिरस्थान, नाभीस्थान, हंसज्वाला, पादुका, धूलेश्वर, सिद्धेश्वर, विजयमन्दिर, कार्त्तिकेय, भैरवी, महावैकाली, वटुकभैरवनाथ, सिद्धचन्दननाथ, स्वामी कार्त्तिक, गणेशस्थान, रत्नचूडेश्वर, त्रिपुरसुन्दरी, ऋणमोक्ष, अन्नपूर्णेश्वरी, छायानाथ, महाकाल, खार्पुनाथ, तारानाथ, रल्लिङ् खोचरनाथ, मानसरोवर कैलाश, गौरीकुण्ड, कनकसुन्दरी, जालपा, खेसमालनी, मालिका, बडीमालिका, वैजनाथ, शीलदेवी, वज्रेश्वर, गोनादेवी, बटुकभैरव, नागनाथ, पातालभुवनेश्वर, केदारनाथ, बदरीनाथ, ऋषिकेश, हरद्वार, कनखल मायापुरी, रेणुका, कालिका, काँगडा, ज्वालाजी, काश्यपेश्वरी, योगेन्द्र, माणकर्ण, मनमहेश, खालसर, सिद्धगोरिया र अमरनाथ इत्यादि।

## १.६ अखण्ड हिमवत्खण्ड

संसारमा जलपछि स्थलको सृष्टि पर्वतैबाट प्रारम्भ हुन्छ। जगज्ज्येष्ठ हिमवान् सबैभन्दा अग्लो छ। बाह्रै मास हिमाच्छन्न रहनाले हिमवान्, हिमाल, हिमालय, हिमशैल, हिमाद्रि, हिमाचल, प्रालेयाचल, प्रालेयमहीधर प्रभृति अन्वर्थ नामले सम्बोधन गरिन्छ। सर्वतोभावेन सर्वोत्कृष्टतया विराजमान् हुनाले र विश्वका पर्वतहरूमा उच्चतम हुनाले 'गिरिराज' भनिन्छ। व्योमकूट (सगरमाथा) जस्ता मुकुट पहिरेका नगाधिराज हिमवान्का शाखा–प्रशाखा प्रत्यन्तपर्वत पूर्व सागरदेखि पश्चिम सागरपर्यन्त पुगेका छन्। 'ब्रह्मपुत्रदेखि सिन्धुसम्म मध्यभाग हो। गिरिराज हिमालय समस्त देवताहरूको अधिष्ठान, समस्त विरक्तहरूको तपःस्थली, समस्त रत्नहरूको जन्मभूमि, समस्त दिव्यौषधीहरूको उत्पत्तिस्थली, समस्त ऋतुहरूको क्रीडास्थली, समस्त फलफूलहरूको वाटिका, समस्त वनस्पतिहरूको बारी, समस्त मृग पशुपक्षी जीवजन्तुहरूको घर, समस्त जातिधर्मको कोश, समस्त धातुहरूको अखण्ड भण्डार, असङ्ख्य नदीहरूको मूलस्थान र मानवताको मूल अवस्थल हुनाले साहित्यमा पनि–

'अस्त्युत्तरस्यां दिशि देवतात्मा हिमालयो नाम नगाधिराजः।
पूर्वापरौ तोयनिधी वगाह्य स्थितः पृथिव्या इव मानदण्डः॥'
'भास्वन्ति रत्नानि महौषधींश्च पृथूपदिष्टां दुदुहुर्धरित्रीम्।'

इत्यादि भनिएको हो। ठूला पर्वतहरूबाट नदीहरू उम्रन्छन्। नदीहरूले सस्यश्यामल देशहरूको निर्माण गर्छन्। पर्वतहरू पृथ्वीका पालक, पोषक र रक्षक हुन्। ठूला पर्वत नभएका ठाउँमा वनस्पति कम हुन्छन्। मेघ वर्षंदैनन्। नदी पनि हुँदैनन् र मरुभूमि हुन्छ। चीन र भारतको मध्यस्थ हिमवान् नहुँदो हो त दुवै भू–भाग मरुस्थलै हुने थिए। पृथ्वीका धारक हुनाले नै पर्वतहरू क्षितिधर, महीधर, धराधर, पृथ्वीधर प्रभृति सार्थक नामले सम्बोधित भएका हुन्। यसमा अनेक हेतु–दृष्यन्तले हिमवान् विशिष्ट छ।

हिमवान्का अञ्चलमा शीत, उष्ण, समशीतोष्ण विभागले मुख्यतया भौगोलिक तीन श्रेणी छन्– हिमचुलीदेखि तल महाभारत पर्वतमालादेखि माथि यौटा श्रेणी, महाभारत पर्वतमालादेखि तल चुरेघाँटीदेखि माथि यौटा श्रेणी, चुरेघाँटीदेखि तल गङ्गादि माथि यौटा श्रेणी। यसैगरी शिलापर्वपरिपाक, मृत्तिकावर्णकाठिन्य, गुहादरी ओडार, पहराछहरा, लतावृक्ष, कन्दमूल, फलफूल, मृग, पक्षी, ग्राम्य पशु, अन्न र हिममानुष, कुसुण्डा, राउट्या प्रभृति मानिसका क्रमिक रूपरङ्ग चालचलन, लवाइखवाइ, पर्वोत्सव, बोली भाषासाहित्य, कलाशिल्प, सभ्यता, धर्म, भावना, व्यवहार आदि प्रत्येक सूक्ष्मतर विशेषता गम्भीर गवेषणको विषय छ।

यिनै कुरालाई लिएर प्रस्तुत ग्रन्थमा यसै हिमवत्पर्वतको मौलिक, भौगोलिक, ऐतिहासिक र धार्मिक परिचय हुनाले 'हिमवत्खण्ड' भन्ने नामकरण भएको छ। यसको वर्णनीय विषय कैलाश मानसरोवरका पूर्वपश्चिम तटबाट निक्लेका ब्रह्मपुत्र र सिन्धुनदीको मध्यवर्ती हिमालय हो। विशेष वर्णन कामरूपदेखि बदरीनाथसम्मको देखिन्छ। त्यसमा पनि कौशिकी र गण्डकी प्रदेशभन्दा विशेष वर्णन नेपालको छ। कामाख्यामाहात्म्य, कौशिकीमाहात्म्य, नेपालमाहात्म्य, गण्डकीमाहात्म्य

(पारकोट परिचय) प्रभृति परिच्छेद छन्। हिमवान्‌का सर्वोच्च सगरमाथा प्रमुख शिखरका नाम व्योमकूट, गणेशाचल, योगाचल, काञ्चनजङ्घा, नीलकण्ठ, इन्द्रनील, मत्स्यपुच्छ, धवलशिरा, सर्पाद्रि, चकोराचल, तारानाथ, बज्रकूट, कैलाश, गङ्गावतार, कलिन्दाद्रि, अमरकण्टक इत्यादि हुन्। कालक्रमले वर्तमान भाषामा सगरमाथा, गौरीशङ्कर, माछापुच्छ्रे, अन्नपूर्ण, धौलागिरि, कञ्चनजङ्घा, सर्पमुस्ताङ, चाखुन्या, ठाँक्या, कागमारा, वासुधा, छयानाथ, तारानाथ, खोचरनाथ, गङ्गोत्तरी, जमुनोत्तरी प्रभृति भएका छन्। सहस्रा र पद्मजस्ता कैलाश मानसरोवरबाट इडा पिङ्गलाफैँ ब्रह्मपुत्र, सिन्धु र मूल भन्ने हिउँचुलीबाट सुषुम्णाजस्ती कर्णालीका व्यापक प्रवाह हिमालयबाटै बगेका छन्। ब्रह्मपुत्र, कौशिकी, गण्डकी, कर्णाली, काली, गङ्गा, यमुना, शतरुद्रा, सिन्धु प्रमुख नदी र नदहरूका सहायक सरोवर, दह, रह, वण्ड, ताल, पोखरी, कुण्ड, नदीहरूका कतिपय नाम वर्तमान भाषामा यसप्रकार छन्–

मानसरोवर, लङ्कारिदह, गौरीकुण्ड, विश्वामित्रकुण्ड, परशुरामकुण्ड, सभापोखरी, बन्दुकेपोखरी,, भूतेपोखरी, साप्सुपोखरी, सदुपोखरी, दूधपोखरी, हेल्लोकपोखरी, महादेवपोखरी, सिद्धपोखरी, दूधपोखरी, रानीपोखरी, कमलपोखरी, नीलकण्ठकुण्ड, गौरीकुण्ड, विष्णुकुण्ड, लक्ष्मीकुण्ड, गरुडकुण्ड, कुबेरकुण्ड, वासुकीकुण्ड, सूर्यकुण्ड, चन्द्रकुण्ड, दूधकुण्ड, रक्तकुण्ड, गणकुण्ड, नवदुर्गाकुण्ड, नवनाथकुण्ड, नवग्रहकुण्ड, नागकुण्ड, इन्द्रकुण्ड, अग्निकुण्ड, धर्मराजकुण्ड, नैर्ऋतिकुण्ड, वरुणकुण्ड, वायुकण्ड, ब्रह्मकुण्ड, हंसकुण्ड, योगकुण्ड, फेवाताल, रूपाताल, वेगनाशताल, मैदीताल, दीपाङ्ताल, खरीताल, वुडुवाताल, खाप्टेताल, आँखेताल, हाँडीताल, कमलपोखरी, दामोदरकुण्ड, शङ्खदह, योगिनीदह, ऋणमोक्ष, गोकुण्ड, धर्मकुण्ड, अन्नपूर्णाकुण्ड, रक्तकुण्ड, पीपकुण्ड, रारादह, रिम्मदह, पाँडिदह, मालिकादह, शारदादह, विमकोटकुण्ड, तडिगैरावारकुण्ड, नैनीताल, रेणुकाकुण्ड, योगेन्द्रकुण्ड, रवालसर, मणिकरणमनमहेशकुण्ड, सरस्वतीकुण्ड प्रभृति अरू असङ्ख्य कुण्ड, पोखरी, ताल, दह, सरोवर र ब्रह्मपुत्र, मानस चालसा, जलढक्का, टिष्य, कनका, मेची, सिद्धनदी, योगमाई, पोखुवामाई, पुवामाई, देवमाई, (चार खोला इलाम), मेवा, मैवा, नेरुवा, मान्माया, कावेरी, वाराही, कोका, फावा, तावा, पिलुवा, सभा, साप्सु, सती, साभा, तमोर, अरूण, वरुण, भोटेकोशी, दूधकोशी, सुनकोशी (सप्तकोशी), इन्द्रावती, रोषी, लीलावती, पुण्यवती, खानीखोला, हनुमती, मणिमती, वाग्वती, रुद्रावती, इक्षुमती, विष्णुमती, प्रभावती, सुप्रभा, चितलाङ, लिखु, तादी, वेत्रावती, त्रिशूली, शूलगण्डकी, धर्मधारा, यशोधारा, केरुङ्खोला, मादी, बूढीगण्डकी, चेप्या, दरमदी, मर्स्याङ्दी, सेती, कृष्णा (सप्तगण्डकी), उत्तरगङ्गा, रूपा, रापती, इरावती, बबै, पातुखोला, कौमुदी, शिवमती, कालीखोला, शारदा, भेरी, व्यासगाड, रूपागाड, छलगाड, तम्रवर्णी, सरस्वती, रिम्मगाड, काइगाड, बाणगङ्गा, खत्याडखोला, गिडिगङ्गा, सापुल्ली, पाद्मगाड, रूपशागाड, सान्निगाड, फुग्गाड, पीलुवगड, कवाडी, लोतीबगड, खार्पुगङ्गा, (यँक्या बगड), धिँगागाड, मुचु, लिमिखोला, छाइलगाड, गराली, लमसवगड, लूमबगड, कालीगाड, धौलीगाड, मेहेलछाम, जुगगाड, उमगाड, धोपाघाट, जवानदी, तिलानदी, हिमानदी, मूलकर्णाली, मैपानीकर्णाली, मुगुकर्णाली, दोलफुकर्णाली, लोहोऱ्या, (डुङ्खोला), पद्मावती (छामगाड), रुद्रावती (नाभिखोला), भैरवी (देवगाड), मालिकानदी, कैलाशनदी, सुनगाड, सेती, जैगाड, बूढीगण्डकी, महाकाली, धौली, अलकनन्दा, मन्दाकिनी, यमुना, व्यासा, रावी, चिनाव, शतरुद्रा, जेलम, ताबी, सरस्वती, सिन्धु, इत्यादि हिमवान्‌बाट प्रवाहित सहस्रशः नदी र नदहरूले उत्तरभारतलाई पालेका छन्।

ऐतिहासिक दृष्टिबाट हेर्दा किराँतवंशको राज्यकाल, लिच्छविवंशको राज्यकाल, वैश (विश्वैंस विसेन सेन) वंशको राज्यकाल र अरू अनेक पुरावेदिवेद्य तत्त्वहरू देखिन्छन्। आगन्तुक किंवदन्तीहरूबाट पनि स्थानीय वर्तमान यथार्थ स्थिति झल्कन्छ। मृगेश्वर, विरूपाक्ष, भृङ्गेश्वर, सर्वेश्वर, धर्मेश्वर, गरुडनारायण प्रभृति प्राचीन आकर्षक प्रतीकहरूका आधारमा धेरै लेखिएको छ। हिमवत्खण्डले चीन र भारतलाई अँगालेर माझमा विशाल हिमालयको मौलिक एकता सँगालेको छ।

१.७ संस्कृत सम्पादकीय

कर्णाली धवला हिमा यवतिला वृद्धा ववै शारदा
भेरी रावतिमालिकाऽथ कमला कृष्णा त्रिशूली सिता।
स्वर्णा ताम्रवती तमोरवरुणा दुग्धाऽरुणा वाग्वती
कल्याणाय वहन्ति नः प्रतिपलं मेची महाकालिका॥१॥
कैलासमानससरोवरसंयुतस्य श्रीब्रह्मपुत्रनदसिन्धुनदान्वितस्य।
विश्वोन्नतस्य सकलौषधिसम्भवस्य दुर्द्धर्ष्यशेखरसहस्रमनोहरस्य॥२॥
रत्नौघधातुपशुपक्षिमृगाकुलस्य प्रालेयनिर्झरनदीनदहारकस्य।

सर्व्वर्त्तुसेव्यसुषमस्य गुहोदरस्य प्रत्यन्तपर्वतसहस्रदृढायतस्य ॥३॥
नीरन्ध्रकाननिरन्तरसंवृतस्य ग्रामाभिरामपृथुपादसरित्तटस्य ।
द्रोणीशतस्य शतशो ह्रददर्प्पणस्य सत्तीर्त्थसार्थपुरुषार्थकृतार्थकस्य ॥४॥
लोकोत्तरस्य गरिमास्य हिमालयस्य गोरक्षराज्यमिदमस्य च राजधानी ।
नेपालमण्डलमखण्डसरोऽस्य तीरे सिद्धाचलोऽत्र विपुलास्ति मृगस्थलीयम् ॥५॥
सिद्धाश्रमोऽत्र विदितः शिवयोगिसिद्धैर्गोरक्षपीठमिह लिच्छविसुप्रतिष्ठम् ।
अत्र स्थितो नरहरिः शिवयोगिनाथो गोरक्षपादगुरुपादसरोजभृङ्गः ॥६॥
धर्म्मानुसारि कुरुते जनतोपकारि कार्यं सदार्यकृतमुद्यमसत्सहायः ।
तेनाऽन्यसज्जनसहायकसंयुतेन ग्रन्थः शिवाय जगतः प्रकटीकृतोऽयम् ॥६॥

यस संस्कृत सम्पादकीयमा श्री योगी नरहरिनाथजीले यसरी राष्ट्रभक्तिद्वारा उद्वेलित भएर नेपालका नदी र हिमालयको सौन्दर्य व्यक्त गर्नुभएको छ। आफूलाई गोरक्षचरणभृङ्ग बनाएर मृगस्थलीमा बसी आफ्नो पुरुषार्थद्वारा लोककल्याणका कार्य गरिरहेको र यसै क्रममा धेरै विद्वान्, सह्योगी र अर्थदाताहरूको सह्योगबाट हिमवत्खण्डको प्रकाशन गरेको तथ्य प्रकाशित गर्नुभएको छ। वास्तवमा योगीजीको यो प्रकाशन र सम्पादन सदाका लागि स्मरणीय र महनीय कार्यका रूपमा रहेको छ। यसका लागि सम्पूर्ण नेपाली नरनारीहरू योगीजीका ऋणी छौँ।

### १.८ हिमवत्खण्डको अभिनव सम्पादन एवं अनुवादको संक्षिप्त चर्चा

महामहिम योगी नरहरिनाथज्यूको सत्प्रयासबाट हिमवत्खण्ड प्रकाशमा आयो। यसबाट राष्ट्रप्रेमी नेपाली कृतार्थ भए। यसको सानुवाद प्रकाशन त गरियो तर हतार हतारमा सम्पादन गरिएकाले हजारौँ पद्यहरू अशुद्ध छापिए। यसमा व्याकरणका नियमको राम्ररी पालना भएको थिएन। पाण्डुलिपि सार्नेको परम्परामा कतिपय संस्कृत नबुझेका मानिसहरू पर्न आउँदा– "विनायकं प्रकुर्वाणो रचयामास वानरम्" भएको देखियो। लगभग १३ हजार श्लोकमध्ये अर्थ शब्दअनुसार नभई भावानुसार बुझ्नुपर्ने भयो। त्यसैले यस महिमशाली ग्रन्थको अभिनव सम्पादन र अर्थापन गर्नुपर्ने देखिएकाले यसमा मेरो प्रवृत्ति भएको हो।

तत्कालीन जल्दाबल्दा विद्वान्हरू क्रमशः श्रीयोगी नरहरिनाथ, पं. पद्मप्रसाद भट्टराई, पं. राधानाथ लोहनी, पं. बुद्धिसागर पराजुली, पं. गङ्गाधर पराजुली, पं. चन्द्रनाथ योगी, पं. सोमनाथ घिमिरे 'व्यास', पं. कृष्णप्रसाद भट्टराई, पं. गोविन्दप्रसाद भट्टराई, पं. गोविन्दप्रसाद सुवेदी, पं. करुणाकर पनेरु, पं. उमानाथ आचार्यजस्ता अनेकौँ सारस्वत पुरुषहरूको अनुवादात्मक प्राज्ञिक योगदान र श्रीजगदम्बादेवीको आर्थिक योगदान यसमा कारक तत्त्व बनेर रहेका थिए। यसको प्रकाशकीय र सम्पादकीयका रूपमा भूमिका लेख्नुहुने योगीजीले पनि आफ्नो सम्पादकीयमा लेख्नुभएको छ– "अरू पौराणिक साहित्यझैँ हिमवत्खण्डमा पनि अनेक समयका रचना देखिन्छन् र प्राचीन लिपिका प्रतिलिपि परम्पराले गर्दा अनेक स्थल दुरूह एवं अन्यथा पनि हुन गएका छन्। हतपतको प्रकाशनमा समयाभाव र सामयिक वस्तुस्थिति झल्काउन–

यदि शुद्धमशुद्धं वा मम दोषो न विद्यते। यादृशं पुस्तकं दृष्टं तादृशं लिखितं मया ॥

यो भनाइअनुसार अनेक पाण्डुलिपिमध्ये दिग्दर्शनार्थ अलिकति पाठभेद दिएर अरू यथासाध्य शुद्ध र विशिष्ट पाठ दिइएको छ। अग्रिम संस्करणमा विशेष अनुसन्धान औ परिवर्तन गर्नुपर्नेछ।"

योगीजीको भनाइमा अग्रिम संस्करणमा अनुसन्धान र परिवर्तन गर्नुपर्नेछ भनिए तापनि चरैवेति चरैवेति सिद्धान्तका सफल प्रयोक्ता योगीजीले नेपाल र संसारका उपयोगी विशिष्ट कार्य गर्दागर्दै सास लिने फुर्सद पाउनुभएन र हिमवत्खण्डतिर फर्केर हेर्न पनि भ्याउनुभएन।

सरयू संस्कृत विश्वविद्यालयमा योगीजी र डा. स्वामी प्रपन्नाचार्यका साथ एउटै कक्षमा ६ महिना सँगै बस्दा उहाँबाट कृपापूर्वक शास्त्रीय गहनातामा प्रवेश गर्ने पद्धति र कविशिक्षा प्राप्त गरी आशुकविको पदवी पाउने सौभाग्य प्राप्त गरेको हुँदा मप्रति कताकता योगीजीको करुणादृष्टि परेजस्तो लाग्छ। मलाई आज उहाँले 'पछि गरौँला' भनेको काम हिमवत्खण्डको सम्पादनको उत्तराधिकारका रूपमा प्राप्त भएको मैले अनुभव गरेको छु।

वि.सं. २०६५ मा मैले विद्यार्थी पुस्तक भण्डारका अध्यक्ष श्री शान्त गौतमको अनुरोधमा निर्णयसिन्धुको नेपाली टीका र हिमवत्खण्डको पुनः सम्पादन एवं पुनः अनुवादको कार्यभार जिम्मा लिएको थिएँ। निर्णयसिन्धुमा खटिँदा लगभग ३ वर्षको समय व्यतीत भयो र त्यो २०६८ नवरात्रमा प्रकाशित भयो। त्यसपछि मात्र मैले हिमवत्खण्डको सम्पादन गर्ने अवसर पाएँ।

२०६८ देखि हिमवत्खण्डका लगभग १३ हजार श्लोकको छन्द, व्याकरण एवं कोशका दृष्टिले शुद्धाशुद्धिको कार्य प्रारम्भ गरें। अनुसन्धान गरी प्रत्येक पद्यलाई शुद्ध बनाउँदा प्रसङ्गअनुसार अर्थ दिने, छन्दसम्मत र व्याकरणसम्मत तुल्याउँदै काम गर्दा २०६९ पौष महिना बितेछ। १३ हजार श्लोकको नेपालीमा अविकल अर्थ पहिल्याउने काम बाँकी नै थियो। त्यसैबेला २०६९ माघ १३ गते मेरो नेपाल संस्कृत विश्वविद्यालय बेलझुण्डी दाङको सेवा आयोगको अध्यक्ष पदमा नियुक्ति भयो।

दाङ गएपछि मेरो हिमवत्खण्डसँग सम्पर्क छिन्नभिन्न भयो। आयोगमा कार्यरत रहँदा श्री परम आराध्या भगवती त्रिशक्ति लीलादेवीज्यूको प्रेरणाअनुसार आह्निकसूत्रावलिको लीलावल्लभी टीका र श्रीमद्देवीभागवतको दिव्यलक्ष्मी टीका रचनामा प्रवृत्त भएँ। २०७२ सम्ममा ती दुबै ग्रन्थ तयार भए। उनै ग्रन्थको प्रकाशन गर्ने कार्य आरम्भ भएपछि म फेरि हिमवत्खण्डको अभिनव अर्थको निष्पत्तिमा लागें। यो पौराणिक कृति भएकाले यसमा कतिपय अतिरञ्जनामूलक र कतिपय यथार्थमूलक कतिपय भयावह सामग्री पनि रहेका छन्। तदनुसार नै अनुवाद गरिएको छ। यसमा प्रथम संस्करणका अनुवादक विद्वान्हरूको अर्थशैलीको यदाकदा अनुगमन गरिएको छ। तत्कालीन भाषाप्रयोगलाई सम्मान गर्दै वर्तमान भाषिक प्रयोगको सरणि अँगालेर अनुवाद गरिएको छ।

ग्रन्थ सम्पादन गर्दा माथिको मूल शुद्धयाई त्यहाँ रहेको अशुद्ध पाठलाई जस्ताको तस्तै पादटिप्पणीमा राखिएको छ। यसबाट अनुसन्धाताहरूलाई हिमवत्खण्डको प्रथम संस्करणमा प्रकाशित यथार्थ स्वरूप बुझ्न सघाउ मिल्नेछ। अशुद्ध पदलाई तल टिप्पणीमा राख्दा इति न. सं. पाठः भनिएको छ। यसको अर्थ योगी नरहरिद्वारा सम्पादित हिमवत्खण्ड नामक पुस्तकको मूलपाठ हो भनी बुझ्नुपर्ने हुन्छ। मूल पाठमा ठाउँठाउँमा भएका पुनरुक्ति हटाई समुचित पाठ विन्यास गरेर गुरुगम्भीर अर्थबोधक बनाउने प्रयास गरिएको छ। प्रथम संस्करणमा श्लोकसंख्या दिँदा यत्र तत्र क्रमभङ्ग भएको देखिन्छ। त्यस्ता त्रुटिहरूको निराकरण गरी तत्तत् स्थानमा सच्याइएको छ। हिमवत्खण्डमा धेरैजसो पाणिनिपूर्वकालिक पौराणिक व्याकरणको प्रयोग गरिएको छ। फेरि प्रतिलिपि–लेखकहरूले "विनायकं प्रकुर्वाणो रचयामास वानरम्" यस उक्तिअनुसार व्याकरण र छन्दःशास्त्रको स्वैरप्रयोग गरेका छन्। यथासम्भव ती त्रुटिहरूलाई निराकरण गर्ने प्रयास गरिएको भएता पनि आफ्नो अज्ञान, प्रमाद र त्वराका कारण धेरै त्रुटिहरू रहन गएका हुन सक्छन्। यसका लागि विद्वान्हरूबाट क्षमा प्राप्त हुने नै छ भन्ने विश्वास लिएको छु।

हिमवत्खण्डको अभिनव सम्पादनको क्रममा कहीँ कहीँ छुटेका चरणहरूलाई वस्तुतथ्य हृदयङ्गम गरी पूरा गर्ने काम गरिएको छ। अनुवाद गर्दा पूर्व–अनुवादकहरूले कारणवश छोडी खण्डित गराएको अर्थलाई यथासम्भव पूर्णता प्रदान गरिएको छ। कहीँ कहीँ छन्दोभङ्ग भएका र व्याकरणको नियमबाट चुकेका पद्यहरूलाई प्रसङ्ग मिलाएर अर्थबोध गराउनका लागि रूपान्तरण पनि गर्नुपरेको छ। अशुद्ध पदको पूर्वप्रारूप टिप्पणीमा राखिएकाले पाठकलाई अझ गहिरिन र मर्मबोध गर्न अवश्य सघाउ पुग्नेछ। यस ग्रन्थको सम्पादन गर्दा पादटिप्पणीमा संख्याको प्रयोग अध्यायव्यापी रूपमा गरिएको छ। यसरी आफ्नो ज्ञानको सीमाले भेटेसम्म सम्पादन गर्दा पनि कहीँ कतै भ्रमवश त्रुटि रहन गएका हुनसक्छन्। यो सम्पादनको प्राग्द्वार हो। यसभित्र पसेर विद्वान्हरूले मूलपाठलाई अझ रमणीय, अझ सार्थक र अझ अविकल बनाउन सक्नुहुन्छ।

यस संस्करणमा प्रथम प्रकाशनका उक्त सबै सामग्रीहरूको सम्पादन गरेपछि समग्र परिशिष्टलाई सानुवाद परिशिष्ट र निरनुवाद परिशिष्ट गरी दुई भागमा बाँडिएको छ। सानुवाद परिशिष्ठअन्तर्गत अनुवादसहित गण्डकीमाहात्म्यम्, पशुपतिपुराणम्, नेपालमाहात्म्यम् र वैश्वानरपुराणम् का साथ नेपालमा लेखिएका ज्वालापुराणभाषा, ज्वालादेवीको स्तुति, चौसट्ठीलिङ्गयात्रा र वाग्वतीयात्राविधान समावेश गरिएको छ। यसै परिशिष्टमा योगीजीद्वारा हिन्दीभाषामा गरिएको अनुवादसहित गोरक्षवरस्तुति समावेश गरिएको छ। निरनुवाद परिशिष्टखण्डमा योगीजीद्वारा सङ्कलित संस्कृत भाषामा निबद्ध शिव, गोरक्ष, बुद्ध र शक्तिसम्बन्धी स्तवात्मक सामग्रीका साथै मल्लवंशावलीलाई ती ती बोध र सूचनाप्रधान विषयहरूको शीर्षभागमा सङ्क्षेपमा नेपालीमा सारांश दिएर समावेश गरिएको छ। परिशिष्टखण्डमा विभिन्न क्रममा प्रस्तुत गरिएका विषयसम्बद्ध कृतिहरू धार्मिक, सांस्कृतिक एवं ऐतिहासिक सूचना एवं बोधका सामग्रीहरू र विभिन्न देवी देवताका स्तुतिहरूका विषयमा यस प्रस्तावनाखण्डमा छुट्टाछुट्टै गम्भीर विवेचन आवश्यक थियो तर ग्रन्थविस्तारको भयले त्यसो गर्न सम्भव भएन। हिमवत्खण्डको सम्पादन र अनुवादका क्रममा ती कृतिहरूको सङ्कलन र, अनुवाद र संशोधन गरिएकाले यसमा रुचि राख्ने विद्वान्हरूलाई अध्ययनार्थ सजिलो हुनेछ भन्ने कुरामा म विश्वस्त छु।

परिशिष्ट खण्डमा योगीजीले पाएसम्मका पुराना सामग्री अनुसन्धान गरी समावेश गर्नुभएको छ। यस संस्करणमा परिशिष्टमा सामग्रीहरूलाई औचित्य र आवश्यकताअनुसार क्रम मिलाएर प्रस्तुत गरिएको छ। योगीजीद्वारा परिशिष्टका गण्डकीमाहात्म्यको खण्डित मूलपाठ र पशुपतिपुराणका केही अध्याय समावेश गरिएका थिए। यस संस्करणमा गण्डकीमाहात्म्य

र पशुपतिपुराणलाई पूरा गरी सानुवाद प्रस्तुत गरिएको छ भने नेपालमाहात्म्यलाई पनि सानुवाद समावेश गरिएको छ। यसरी अनुवादसहित अविकलरूपमा तीनवटै ग्रन्थलाई प्रस्तुत गर्दा यो हिमवत्खण्डनामक ग्रन्थ नेपाली इतिहास, भूगोल, धर्म, संस्कृतिको प्रतिपादन गर्ने एउटा सुन्दर कोशग्रन्थका रूपमा तयार भएको छ।

गण्डकीमाहात्म्य, पशुपतिपुराण र नेपालमाहात्म्यजस्ता नेपालको धार्मिक, सांस्कृतिक र सामाजिक महिमाका उद्‌बोधक शास्त्रीय सामग्रीका साथ प्रकाशित हुन लागेको यो हिमवत्खण्ड नेपालसम्बन्धी पौराणिक, सांस्कृतिक, भौगोलिक, ऐतिहासिक, धार्मिक र सांस्कृतिक दृष्टिले इन्साइक्लोपिडिया नै हुनगएको छ। प्राच्य नेपालको गौरवगायन गर्ने यो ग्रन्थ उक्त तीन महत्त्वपूर्ण ग्रन्थको सानुवाद प्रस्तुत गरिँदा नेपालीहरूले गौरव गर्ने एउटा अद्वितीय आकरग्रन्थका रूपमा उदाएको छ।

स्कन्दमहापुराणअन्तर्गत हिमवत्खण्डबाट झिकी परिशिष्टमा राखिएका दिव्य शिवसहस्रनाम र गुह्येश्वरी –सहस्रनामलाई परिशिष्टबाट हटाई अनुवादसहित मूलखण्डमा समावेश गरिएको छ। हिमवत्खण्डका मानिने यी दुई अध्यायलाई हिमवत्खण्डको प्रथम संस्करणमा किन समावेश गरिएन र परिशिष्टमा राखियो भन्ने विषयमा प्रथम संस्करणको भूमिकामा कतै पनि कुनै सङ्केत पाईंदैन। प्रथम संस्करणको सम्पादन र अनुवाद गर्दासम्म यी दुई अध्याय आदर्श पाण्डुलिपिमा समेत समावेश नगरिएको र पछि ग्रन्थ छापिँदै जाँदा सम्पादकहरूको प्रयासबाट हिमवत्खण्डको अर्को कुनै पाण्डुलिपि फेला पारिएपछि ती दुई अध्यायलाई परिशिष्टभागमा समावेश गरिएको हुनुपर्छ भन्ने अनुमान गर्न सकिन्छ।

पूर्वप्रकाशित हिमवत्खण्डमा जम्मा १८६ अध्याय रहेकोमा उक्त दुई अध्याय थपिँदा अब हिमवत्खण्डको अध्यायसंख्या १८८ हुन आएको छ। हिमवत्खण्डको अभिनव अनुवादका क्रममा नै परिशिष्टमा निहित उक्त दुई अध्यायको पनि अनुवाद गरी प्रसङ्गअनुसार दिव्य शिवसहस्रनामलाई ८३ औँ अध्यायका रूपमा र गुह्येश्वरी सहस्रनामलाई १५२ औँ अध्यायका रूपमा समावेश गरिएको छ। प्रथम संस्करणमा परिशिष्टखण्डमा तमसुके शैलीमा राखिएका विषयवस्तुलाई सुसङ्गठित, सुव्यवस्थित, रोचक र आकर्षक तुल्याइएको छ। संस्कृतभाषामा निबद्ध महत्त्वपूर्ण मानिने, टुक्राटुक्रीका रूपमा रहेका बोध र सूचनाका सामग्रीलाई पनि शीर्षभागमा नेपाली भाषामा परिचय दिएर प्रस्तुत गरिँदा ती सामग्रीको मूल्यबोध भई सर्वसाधारण पाठक अवश्य नै लाभान्वित हुनेछन्।

हिमवत्खण्डका १८८ अध्यायका विषयवस्तुको संसूचन पुष्पिकावाक्यहरूमा गरिएतापनि एउटा प्रसङ्ग पूरा नहुँदै अर्को प्रसङ्ग गाँसिने पौराणिक शैलीको प्रयोग यस ग्रन्थमा पनि भएको छ। यसरी गुम्फन गरिएका विषयवस्तुको लगातार अध्ययन गर्दै जाँदा पाठकहरूको मन स्वतः थाकेर आउने कुरा निश्चित छ। पाठकलाई बीचबीचमा विश्रान्ति आवश्यक हुन्छ। त्यो अपेक्षा पूरा गर्न यस ग्रन्थलाई विषयानुसारका प्रकरणमा बाँधेर पाठकहरूमा विषयबोधमा अभिरुचि पैदा गर्ने उद्देश्यले यस ग्रन्थलाई अभिनव सम्पादनका क्रममा तल लेखिएका ६ प्रकरणमा विभाजन गरिएको छ – १. हिमालय–दिक्पाल–प्रकरण (१–२२ अध्याय), २. देवासुर–सङ्ग्राम–प्रकरण (२३–३१ अध्याय), ३. कामाख्या–कोशी–गण्डकी–प्रकरण (३२–६२ अध्याय), ४. नेपालमाहात्म्यप्रकरण (६३–८९ अध्याय), ५. चौसट्ठीलिङ्ग–प्रकरण (९०–१६३ अध्याय), ६. पाशुपतक्षेत्र वर्णन एवं श्रीकृष्ण–नेपालयात्रा– प्रकरण (१६४–१८८ अध्याय)।

यसरी हिमवत्खण्डको प्रकरणविभाजन, सम्पादन, अनुवाद र परिशिष्टको व्यवस्थापन गरी प्रकाशित हुन लागिरहेको हिमवत्खण्डले विश्वसामु नेपालको गौरवगाथा प्रस्तुत गरी नेपाल आमाको अद्‌भुत र विलक्षण छवि उजागर गर्नेछ भन्ने विषयमा म विश्वस्त छु।

अभिनव सम्पादन, अभिनव अनुवाद, पशुपतिपुराण, गण्डकीमाहात्म्य, एवं नेपालमाहात्म्य नामक नेपालपरक पवित्र कृतिहरूको अनुवादसहित थप संयोजन तथा परिशिष्टको व्यवस्थापन र समग्र ग्रन्थको प्रकरणविभाजन जस्ता कार्य गरी परिश्रमपूर्वक गरिएको यस प्रस्तुतिबाट मलाई लाग्दछ कि वाग्देवताका अवतार महर्षि योगी नरहरिनाथज्यूको ब्रह्मरूप आत्मा प्रसन्न हुनेछ।

ॐ

## द्वितीय परिच्छेद

# हिमवत्खण्डको प्रकरणगत विषयवस्तु

### २.१ हिमवत्खण्डका प्रकरण एवं अध्यायशीर्षकहरूको चर्चा

हिमवत्खण्डको अध्ययन र विषयबोधका लागि यस संस्करणमा मूल पाठको प्रकरण विभाजन गरिएको तथ्य बताइसकिएको छ। प्रकरणहरूको शीर्षक निर्धारण गर्दा सम्बद्ध प्रकरणको मुख्य विषयलाई आधार मानिएको छ। प्रत्येक प्रकरणमा अरू प्रकरणका विषय पनि शृङ्खलाबरूपमा रहेका हुनसक्छन्। त्यसकारण प्रकरणको मुख्य विषयलाई प्रकरण विभाजनको आधार मानिएको हो। प्रत्येक प्रकरणमा बोध र सूचनाका भव्य सामग्री रहेका छन्। ती सबैले हिमालय र नेपालको महिमा उजागर गर्दछन्। समग्र हिमवत्खण्डले यिनै छवटा प्रकरणमा वर्णन गरिएका विषयका आधारमा हिमालयका तीर्थ नदी, पर्वत, कुण्ड र धामहरूको परिज्ञान गराउँछ। यसले नेपालको प्राचीन गौरवलाई हृदयङ्गम गराउँछ। यसमा नेपालको महिमा, पाशुपतक्षेत्रको महिमा, राष्ट्रदेव पशुपतिको आविर्भाव, चौसठ्ठीलिङ्ग, सप्तकोशी, सप्तगण्डकीका अनुपम दृश्य वर्णन गरिएका छन्। यसमा मुनितीर्थ, धर्मतीर्थ, मुक्तिनाथ, गोसाईंकुण्ड, देवघाट, मानससरोवर आदिको सुन्दर वर्णन गरिएको छ। भगवान् श्रीकृष्णको नेपाल यात्रा र उहाँकै मुखबाट नेपालको महिमा वर्णन पनि ज्यादै रोचक शैलीमा प्रस्तुत गरिएको छ। यिनै नेपालका धार्मिक र सांस्कृतिक प्रतीकहरूको महिमा बुझाउनका लागि प्रस्तुत गरिएका कथाहरूका शृङ्खलाको आफ्नै किसिमको उद्देश्य र सन्देश रहेको छ।

हिमालयको काखमा रहेको नेपालको माटोका कणकणमा देवताको दर्शन गर्ने प्राचीन नेपाली मानसिकतालाई यस हिमवत्खण्डले हुबहु प्रतिबिम्बित गराएको छ। काम, क्रोध, लोभ, मोह, मद र मात्सर्यबाट पैदा हुने मानसिक विकृतिका कारण दुःखमा रुमल्लिएका प्राणीहरूलाई विभिन्न आख्यान एवं उपाख्यानको माध्यमबाट आत्मबोध र गन्तव्य दिग्दर्शन गराउने यो हिमवत्खण्ड विषयवस्तुका दृष्टिकोणबाट हेर्दा नेपालको सुनौला इतिहास हो, सुन्दर भूगोल हो, धर्म हो, संस्कृति हो, आचारशास्त्र हो र नेपालको राष्ट्रियता संवहन गर्ने दिव्य राष्ट्रध्वज पनि हो।

हिमवत्खण्डका प्रकरण र अध्यायहरूमा देवभूमि नेपालका नदी, कुण्ड एवं तीर्थहरूमा स्नान, देवदर्शन एवं शिव र शक्तिको आराधनालाई मुख्य विषय बनाई ती-ती कर्महरूबाट शरीर, इन्द्रिय, मन र आत्मालाई निर्मल तुल्याउँदै जाँदा जीवले शिवको दर्शन गर्ने तथ्य यस ग्रन्थमा मुख्यतया बताइएको छ। यसमा कोशी एवं गण्डकीको उत्पत्ति, कोशीक्षेत्र र गण्डकी क्षेत्रका तपस्वीहरू, ती नदीहरूबाट बनेका तीर्थहरूको समेत परिचय दिएर प्राचीन नेपाली भूगोलको नक्सा कोरिएको छ।

यसमा किरात समाज, किरात राज्य, वैशालीबाट नेपालमा आएका लिच्छविहरूको पनि संक्षेपमा वर्णन गरिएको छ। यस ग्रन्थमा नेपाल उपत्यकाको प्राकृतिक एवं धार्मिक सौन्दर्य, राष्ट्रदेव पशुपतिनाथको प्रादुर्भाव, नेपालका उत्तरगया आदि महनीय तीर्थ, नेपाल उपत्यका र त्यस वरिपरिका चौसठ्ठी शिवलिङ्गहरूको विषयमा समेत यसमा प्रकाश पारिएको छ। यहाँ गोकर्णेश्वर, किरातेश्वर र भगवान् बुद्धको महिमा बताउनुका साथै वराहक्षेत्र, गोसाईंकुण्ड, पाशुपतक्षेत्र, देवघाट, मुक्तिनाथ आदि तीर्थ र नेपाल बाहिरका महत्त्वपूर्ण तीर्थहरूको समेत परिचय प्रदान गरेर हिमवत्खण्ड नामलाई सार्थक तुल्याइएको छ। अन्तमा, नेपाल माहात्म्य र कृष्णको नेपालयात्रा वर्णन गर्दै कृष्णकै मुखारबिन्दबाट नेपाल भूमिका तीर्थहरूको वर्णन गराई नेपालको महान् उत्कर्ष स्थापित गरिएको छ।

### २.२ विषयवस्तु वर्णन

हिमवत्खण्डका १९८ अध्यायको माथि गरिएको प्रकरणविभाजनअनुसार तल प्रत्येक प्रकरणको नामोल्लेखनसहित ती प्रकरणहरूभित्रका अध्यायहरूमा समाविष्ट विषयको संक्षिप्त विवरण प्रस्तुत गरिँदैछ।

#### २.२.१ हिमालय-दिक्पाल-प्रकरण

अध्याय एक - प्रस्तुत ग्रन्थ एवं प्रकरणको प्रथम अध्यायमा कुमार र अगस्त्यको संवादका क्रममा सर्वप्रथम कुमारले अगस्त्यका प्रति हिमालयको वर्णन गर्न आरम्भ गर्नुभएको छ। सोही क्रममा जलशायी नारायणको वर्णन गरिएको छ। मधु र कैटभको उत्पत्तिका साथै उनको वीरता प्रकट गरी ब्रह्माजीका साथ मधु र कैटभको संवाद भएको छ। ब्रह्माजीले भगवान्

नारायणलाई ब्यूँझाउन महामाया योगनिद्राको स्तुति गरेपछि विष्णु भगवान्ले जागेर मधु र कैटभको संहार गरी पृथिवीको उद्धार गर्नुभएको विषय समावेश गरिएको छ।

अध्याय दुई – वराह भगवान्को उत्पत्ति, ब्रह्माद्वारा भगवान् रुद्रको स्तुति, ज्योतिर्मय रुद्रको दर्शन, ज्योतिर्मय रुद्रद्वारा ब्रह्माजीलाई वरदान, वरदान प्राप्त गरेका ब्रह्माजी सृष्टिकार्यमा प्रवृत्त हुँदा महान् अण्डको सृष्टि, पृथिवीद्वारा भगवान् विष्णुको स्तुति, विष्णुद्वारा पृथिवीलाई सकल चराचर धारण गर्ने शक्तिप्रदान, महावराहका रूपमा रहनुभएका भगवान् विष्णुद्वारा पृथिवीको उद्धार र वराहको स्वरूपको वर्णन यस अध्यायका मुख्य विषय हुन्।

अध्याय तीन – जम्बू आदि द्वीपहरू र क्षारोद आदि समुद्रहरूको परिमाण बताउँदै सुमेरुपर्वतको वर्णनका क्रममा सम्पूर्ण पर्वतहरूको सृष्टिप्रक्रियाको निरूपण, पूर्व आदि दिशाहरूमा रहेका सुवर्णमय र धातुमय शृङ्गहरू एवं अरू सानासाना पर्वतहरूको विस्तृत वर्णनका साथै वृक्ष, पुष्प, फल, झरना, गुफा आदिहरूको वर्णन पनि यस अध्यायका प्रमुख विषय हुन्।

अध्याय चार – संसारको सृष्टि गर्न चाहने ब्रह्माजीद्वारा शिवको स्तुति, ब्रह्माजीको स्तुतिबाट प्रसन्न हुनुभएका ज्योतिर्मय भगवान् शिवद्वारा ब्रह्माजीलाई वरप्रदान, ब्रह्माजीद्वारा लोकसृष्टिको आरम्भ, भगवान् विष्णुको कृपाबाट लोकसृष्टिको सम्पन्नता, ब्रह्मा, विष्णु र रुद्र तीनै देवताको मूल स्वरूप एउटै हो भन्ने विषयको प्रतिपादन, जगत् शिव र शक्तिद्वारा निर्मित हो र जगत् शिवशक्तिमय छ भन्ने तथ्यको प्रतिपादन, लोकसृष्टिको क्रममा चन्द्र, सूर्य आदि देवताहरू र ब्राह्मण आदि वर्णहरूको सृष्टिप्रक्रियाको पनि वर्णन यस अध्यायका प्रमुख विषय हुन्।

अध्याय पाँच – सम्पूर्ण भुवनहरूको सृष्टिप्रक्रिया, नागराज वासुकि र पाताललोकको विस्तारपूर्वक वर्णन, पातालवर्णनका क्रममा महापद्मनागको वर्णन, सुतल आदि लोकहरूको परिचय, कर्कट नागको अद्‌भुत सामर्थ्यको वर्णन, शङ्खपाल र पद्मनामक नागहरूका आश्रमको वर्णन, पद्मनागको कीर्तिकथा, अनन्तनागको शिवभक्ति र रौरव आदि नरकहरूको दिग्दर्शन यस अध्यायका प्रमुख प्रतिपाद्य विषय हुन्।

अध्याय छ – जम्बू आदि सात द्वीपको महिमा, जम्बूदीपको बीचमा हिमालयपर्वतको स्थितिनिरूपण, भूर्लोक र भुवर्लोकको विस्तारपूर्वक वर्णन, भूर्लोकको नजिकमा रहेका रुद्र, सूर्य एवं वसु आदि देवताहरूको वर्णन, सूर्यमण्डलदेखि ध्रुवलोकसम्मको भागलाई स्वर्गलोक भनिन्छ भन्ने रहस्यको प्रतिपादन, ध्रुवलोकको विस्तारपूर्वक वर्णनका साथ सात किसिमका वायुहरूको पनि वर्णन, ध्रुवलोकमा रहेका वायुस्कन्धहरूको वर्णनको क्रममा परिवहनामक सातौँ वायुमण्डलको वर्णन, महर्लोक आदि लोकहरूको स्थिति, विष्णु आदि देवताहरूका लोकहरूको वर्णन र शिवमहिमाको पनि प्रतिपादन यस अध्यायमा समाविष्ट उल्लेख्य विषय रहेका छन्।

अध्याय सात – ब्रह्माजीद्वारा पर्वतहरूको सृष्टि, ब्रह्माजीको आज्ञाबाट पितृहरूद्वारा कन्याहरूको उत्पादन, सुमेरुसहित हिमालयद्वारा ब्रह्माजीको स्तुति, सन्तुष्ट भएका ब्रह्माजीद्वारा हिमालय र सुमेरुलाई सूक्ष्मशरीर प्रदान, हिमालयको पितृहरूकी कन्या मेनासँग र सुमेरुको पितृकन्या सुलक्षणासँग विवाह, हिमालयद्वारा ब्रह्मा र विष्णुबाट वरप्राप्ति, हिमालयको शिवदर्शनका लागि तपस्या आदि विषयको वर्णनमा यो अध्याय केन्द्रित छ।

अध्याय आठ– शिवजीको दर्शनका लागि हिमालयको तपस्या, हिमालयद्वारा देवताहरूलाई आश्रयप्रदान, गण्डकी, शतरुद्रा, भागीरथी, वाग्वती आदि नदीहरूको र हिमालयको महिमा बताउने प्रसङ्गमा हिमालयशिखरमा रहेका तपस्वीहरूले मुक्ति प्राप्त गरेको इतिवृत्तनिरूपण, यस सन्दर्भमा अगस्त्यलाई सन्तोष प्रदान गर्दै हिमालयबाट पैदा भएका नदीहरूको जलपान गर्नाले कथानायक म्लेच्छको सद्‌गति भएको तथ्यको प्रस्तुति, विभिन्न पर्वतहरूका चुलीहरूमा रहेका पवित्र स्थानहरूको वर्णन, शिलाको उपाख्यान, जलेश्वर आदि शिवलिङ्गहरूको महिमा वर्णन र हिमालयको विशेषता यस अध्यायका उल्लेख्य विषय हुन्।

अध्याय नौ – च्यवनको आश्रममा पुगेका बंगुनामक आदिवासीको कथा बताउने सन्दर्भमा च्यवनद्वारा आदिवासीलाई शाप प्रदान, आदिवासीद्वारा क्षमायाचना, च्यवनको आज्ञाबाट आदिवासीको हिमालययात्रा, त्यसै क्रममा बद्रीनाथधाममा प्राप्ति, बद्रीनाथको प्रभावले आदिवासीको मुक्ति, बद्रीनाथधामका तप्तकुण्ड आदि कुण्डहरूको महिमा, बंगु र नारदको संवाद, लोमशद्वारा तीर्थको महिमावर्णन, भगवान्का भक्त अनेक आदिवासीहरूको मुक्ति आदि विषयहरू यस अध्ययमा समावेश गरिएका छन्।

अध्याय दश – हिमालयको महिमा बताउने प्रसङ्गमा सदाचारी, वैदिक हिन्दुहरूले प्रातःकालमा गर्नुपर्ने कृत्यहरूको निरूपण, ब्राह्ममुहूर्तमा गरिने सदाचारको निरूपण, दन्तधावनविधि, स्नानभन्दा पहिले जलस्पर्श गर्ने मन्त्र, स्नानविधि, प्राणायाम आदि कृत्य, देवतर्पण एवं पितृतर्पणको चर्चा गर्नुका साथै उक्त कर्महरू सम्पादन गरेको फलप्रतिपादन, सन्ध्या र प्राणायामको विधि, जपविधि र रुद्राक्षमालाको महिमावर्णन यस अध्यायका उल्लेख्य विषय हुन्।

अध्याय एघार – योगीहरूको धर्म वर्णन गर्ने क्रममा एठ्य योगीले प्रातःकालमा गर्नुपर्ने कर्मको निरूपण, योगीको भस्मधारण विधि, ध्यानविधि, प्राणायामका नियम, मानसपूजा, मानसपूजाका उपचार, योगीले गरेको जपको फल, भस्मको महिमा, भस्मस्नानको फलनिरूपण, ब्राह्मणको कर्तव्य बताउने सन्दर्भमा विष्णुदास ब्राह्मणको कथा निरूपण, विभूति एवं रुद्राक्षको महिमा, रुद्राक्षधारणको फल, एकमुखेदेखि चौधमुखेसम्मका रुद्राक्षहरूको महिमाको वर्णन यस अध्यायका उल्लेख्य विषय हुन्।

अध्याय बाह्र – हिमालयको महिमावर्णन, महर्षि कश्यपको परिचय, इन्द्रको चरित्र, ऋषिहरूद्वारा गरिएको इन्द्रको प्रशंसा, इन्द्रद्वारा हिमालयमा तपस्या, इन्द्रले तपस्या गरेका कारण बन्न गएको इन्द्रतीर्थ, इन्द्रद्वारा शिवजीको स्तुति, शिवजीबाट वरप्राप्ति, इन्द्रले इन्द्रतीर्थमा अभिषेक गर्ने क्रममा बृहस्पति आदि महर्षिहरूको आगमन र इन्द्राभिषेक–महोत्सवजस्ता विषयको निरूपणमा यो अध्याय केन्द्रित छ।

अध्याय तेह्र – हिमालयको महिमगानको प्रसङ्गमा ब्रह्माजीका छोरा अङ्गिरानामक ब्राह्मणको परिचय, अङ्गिरा र उनका छोरा अग्निको संवाद, आफ्ना पिताको निर्देशअनुसार अग्निद्वारा भगवान् शिवको आराधना, अग्निका सामु भगवान् शिवको आविर्भाव, अग्निद्वारा भगवान् शिवको स्तुति, शिवबाट वरप्राप्ति, अग्निको पुनः तपस्या, अग्निले तपःसिद्धि गरेको देखेर स्वर्गमा महोत्सव, अग्निको ब्रह्माजीका साथ ब्रह्मलोकयात्रा र दिक्पालपदप्राप्तिजस्ता विषय यस अध्यायमा समाविष्ट छन्।

अध्याय चौध – अगस्त्य ऋषिद्वारा यमराज र उनले गरेको तपस्या आदि विषयमा प्रश्न गर्दा कुमारद्वारा यमको परिचय प्रदान, अग्निले तपस्याको प्रभावले दिक्पालपद पाएको थाहा पाएर यमराजको पनि तपस्याका लागि यात्रा, शिवजीको आराधना, यमद्वारा गरिएको शिवस्तोत्रपाठ, स्तुतिबाट प्रसन्न हुनुभएका शिवद्वारा यमलाई वरप्रदान, यमले सिद्धि प्राप्त गरेको सुनेर देवताहरूको हर्ष, तीर्थजलले भरिएका कलशद्वारा अभिषेक गरी यमराजलाई दक्षिणदिशाको दिक्पालपदमा अभिषेकजस्ता विषयको चर्चा यस अध्यायमा गरिएको छ।

अध्याय पन्ध्र – कश्यपका छोरा नैर्ऋतको परिचय, नैर्ऋतद्वारा कश्यपको प्रशंसा, कश्यपबाट शिवजीको तपस्या र आराधना गर्दा प्राप्त हुने गौरवपूर्ण फलको वर्णन, सोही प्रसङ्गमा कश्यपद्वारा आफ्ना छोरा नैर्ऋतलाई सम्मान, मानसरोवरको उत्पत्ति, मानसरोवर तीर्थमा स्नान गरेको फलवर्णन, नैर्ऋतको मानसरोवरयात्रा, तपस्याबाट प्रसन्न हुनुभएका भगवान् शिवको आविर्भाव, शिवबाट वरप्राप्ति, वर प्राप्त गरेका नैर्ऋतको नारद आदि देवताहरूले मिलेर दिक्पालपदमा अभिषेकजस्ता विषयको प्रतिपादन यस अध्यायमा गरिएको छ।

अध्याय सोह्र – कश्यपका छोरा वरुणको परिचय, वरुणका समक्षमा नारदको आगमन, नारद र वरुणको संवाद, नारदद्वारा वरुणको प्रशंसा र शिवको महिमा निरूपण, वरुणद्वारा शिवजीको तपस्या, शिवजीको आविर्भाव र वरुणलाई वरप्रदान, वरुणद्वारा शिवजीको स्तुति र दिक्पालपदप्राप्ति, शिवजीका हर, उग्र, कालेश्वर आदि नामहरूको महिमावर्णनका साथै सुधातीर्थको वर्णन यस अध्यायका उल्लेख्य विषय हुन्।

अध्याय सत्र – वायुदेवताको परिचय, वायुको उत्पत्तिप्रसङ्गमा कश्यपकी पत्नी दितिको परिचय, इन्द्रद्वारा आफ्नी विमाता दितिको गर्भमा प्रवेश गरी गर्भमा रहेका बालक वायुको शरीरलाई टुक्राटुक्रा बनाउँदा वायुले प्रार्थना गरेपछि उनलाई जीवनप्रदान र उनको उत्पत्ति आदिबारे यस अध्यायमा चर्चा गरिएको छ।

अध्याय अठार – वायुको समक्षमा नारदजीको आगमन, वायुद्वारा नारदको सत्कार, आफ्ना लागि तपस्या गर्ने उपयुक्त स्थान कुन हुन सक्छ भन्ने वायुको जिज्ञासा शान्त गर्ने क्रममा नारदजीद्वारा हिमालयको महिमा बताई त्यसअन्तर्गत ब्रह्मतीर्थमा गरिने स्नानको महत्त्व बताउनु, वायुद्वारा ब्रह्मतीर्थमा स्नान र शङ्करको पूजन गरी उहाँको स्तुति गर्नु, भगवान् शङ्करद्वारा वायुलाई वरप्रदान, वायव्य दिशाको दिक्पालका रूपमा वायुको अभिषेक, ब्रह्मतीर्थको महिमावर्णन आदि यस अध्यायका मुख्य प्रतिपाद्य विषय हुन्।

अध्याय उन्नाइस – कुबेरको उपाख्यान, मुनि विश्रवाद्वारा कुबेरलाई शिवको तपस्या गर्ने आज्ञा, कुबेरको तपस्या, कुबेरको तपस्यासिद्धि, रावणको तपस्या, शिवद्वारा रावणलाई वरदान र ज्ञानतीर्थको महिमावर्णन यस अध्यायका मुख्य विषय रहेका छन्।

अध्याय बीस – शिवको यज्ञस्वरूपताको वर्णन, धर्मको प्रशंसा, भस्मतीर्थको वर्णन, भस्मतीर्थमा रहेका नदीहरूको निरूपण र स्नानफल, रुद्रकृत तपस्याको वर्णन र रुद्रतेजको चर्चा यस अध्यायका मुख्य विषय रहेका छन्।

अध्याय एक्काइस – रुद्रको तेजको शान्तिका लागि ब्रह्मा आदि देवताहरूको शिवको समीपमा प्राप्ति, सूर्य, चन्द्र आदि देवताहरूद्वारा गरिएको रुद्रतेजशान्ति प्रयास, देवताहरूद्वारा शिवको स्तुति, स्तुतिबाट प्रसन्न हुनुभएका शिवजीद्वारा देवताहरूलाई अभयप्रदान, "हामीहरू हजुरविना स्वर्गमा रहन सक्दैनौं" भनी शिवसमक्षमा देवताहरूको निवेदन, देवताहरूद्वारा जल, फूल, अक्षता आदि अर्पण गरी शिवको अभिषेक, अभिषेक–महोत्सवपछि देवताहरूको आ–आफ्नो आश्रमका लागि प्रस्थानजस्ता विषयहरू यस अध्यायमा रहेका छन्।

अध्याय बाईस – उत्तानपाद राजाको वर्णन, राजाद्वारा आफ्ना पुत्र ध्रुवको तिरस्कार, तपस्याका निमित्त ध्रुवको वनयात्रा, ध्रुव र सप्तर्षिहरूको भेटघाट एवं संवाद, ध्रुवद्वारा हिमालयमा आई शिवजीको तपस्या, तपस्याबाट प्रसन्न हुनुभएका शिवद्वारा ध्रुवलाई वरदान र शिवजीको कृपाबाट ध्रुवद्वारा ध्रुवपदप्राप्ति यस अध्यायका मुख्य विषय हुन्।

### २.२.२ देवदानवयुद्ध–प्रकरण

अध्याय तेईस – ब्रह्मपुत्र नद र कामधारा नदीको वर्णन, कामाख्या भगवतीको महिमानिरूपण, कामक्षेत्रको महिमा, शिवको कामक्षेत्रमा निवास, हिरण्यकशिपु आदि दैत्यहरूका साथमा देवताहरूको युद्ध–उद्योग, स्वर्गराज्यको कामनाले युद्ध गर्न उत्सुक भएको हिरण्यकशिपुलाई देखेर दैत्यहरूद्वारा युद्धसामग्रीको तयारीबारे कुमारले अगस्त्यलाई उपदेश गरेका विषय यस अध्यायमा रहेका छन्।

अध्याय चौबीस – हिरण्यकशिपुका वैदूर्य आदि मणिद्वारा अलङ्कृत सुवर्णमय रथहरूको वर्णन, रथी र सेनापतिहरूलाई हिरण्यकशिपुको आदेश, अनेक थरीका वाहनहरूको स्वरूप, दैत्यहरूको आकाशमार्गद्वारा युद्ध गर्न प्रस्थानजस्ता विषयको वर्णन यस अध्यामा गरिएको छ।

अध्याय पच्चीस – दैत्यहरूको युद्धको तयारी देखेर नारदजीको इन्द्रलोकतर्फ प्रस्थान, नारद–इन्द्रको वार्ताका क्रममा हिरण्यकशिपुको युद्ध–उद्योग, स्वर्गमाथि विजय गर्न प्रयत्नशील हिरण्यकशिपुको समाचारको प्रस्तुति, इन्द्रद्वारा विश्वकर्मा, जयन्त, सूर्य, चन्द्रमा, वरुण र कुबेर आदि दश दिशाका नायकहरूलाई युद्धको तयारी गर्न दिइएको आदेशजस्ता विषयहरू यस अध्यायमा समाविष्ट छन्।

अध्याय छब्बीस – स्वर्गमा युद्ध गर्न तयार भएका देवताहरूलाई देखेर हिरण्यकशिपुद्वारा आफ्ना सैनिकहरूलाई युद्ध गर्न आदेश, दैत्यसेनाको युद्धकौशलवर्णन, हिरण्यकशिपुका कान्छा छोरा प्रह्लादको वीरतावर्णन, युद्धमा दैत्यहरूको पराजय देखेर प्रह्लादद्वारा दैत्यहरूलाई उत्साहप्रदान र पुनः युद्धको आरम्भ आदि यस अध्यायका मुख्य वर्णनीय विषय हुन्।

अध्याय सत्ताईस – देवासुर सङ्ग्रामको वर्णन, काल र संह्लादको महायुद्ध, निकुम्भदैत्यको युद्धकलाको वर्णन, काल र नैर्ऋतको युद्धबारेको चर्चा यस अध्यायका मुख्य विषय रहेका छन्।

अध्याय अट्ठाईस – कालनामक दैत्यका साथमा प्रचेताको युद्ध, बलिका साथमा वायुको युद्ध, परस्परमा विजयको आकाङ्क्षा गर्ने देवता र दानवहरूको विशेष युद्ध, दानवद्वारा वरुण र वायुको पराजय आदि यस अध्यायका मुख्य प्रतिपाद्य विषय हुन्।

अध्याय उनन्तीस – कुबेर र विप्रचित्तिको युद्ध, मायावी मयको त्वष्टाका साथ युद्ध, देवता र दानव सैन्यहरूको परस्परमा बाहुयुद्ध, मुष्टियुद्ध, गदायुद्ध र बाणयुद्धको सजीव चित्रण आदि यस अध्यायका मुख्य प्रतिपाद्य विषय हुन्।

अध्याय तीस – देवासुर–सङ्ग्राममा इन्द्रद्वारा दैत्यहरूको वध, देवता र दानवहरूको फेरि घोर युद्ध, वरुण, वायु र कुबेरद्वारा दैत्यहरूमाथि शस्त्र–अस्त्रको प्रहार, दैत्यहरूको पराजय, शुक्राचार्यद्वारा मृत दैत्यहरूलाई जीवनदान, जीवन प्राप्त गरेका दैत्यहरूद्वारा देवताहरूको पराजय र बृहस्पतिको युद्धस्थगन गर्ने मन्तव्य आदि यस अध्यायका मुख्य प्रतिपाद्य विषय रहेका छन्।

अध्याय एकतीस – भगवान् वराहको पवित्र चरित्रवर्णन, देवताहरूलाई देवीले दिएको श्रापविषयक तथ्यप्रकाशन, इन्द्र आदि देवताहरूद्वारा देवीको स्तुति, देवताहरूद्वारा शिवको शरणमा प्रयाण, देवताहरूको दीर्घकालिक स्तुतिपछि प्रसन्न हुनुभएका शिवजीको आज्ञाद्वारा दधीचिलाई खुसी गराउन देवताहरू दधीचिको समीपमा जानु, दधीचिबाट अस्थि प्राप्त गरेपछि त्यसबाट शस्त्र–अस्त्र निर्माण गरेर देवताहरूद्वारा दानवका साथमा युद्ध, त्यस युद्धमा देवताहरूको विजय, वराह र हिरण्याक्षनामक दुई वीरहरूको परस्पर संवाद र वराहद्वारा हिरण्याक्षको संहार आदि विषयको वर्णन यस अध्यामा गरिएको छ।

### २.२.३ कामाख्या–कौशिकी–गण्डकी प्रकरण

अध्याय बत्तीस – सुन्दरनामक पर्वतको प्रकृतिक सौन्दर्यको वर्णन, वराहपर्वतको महिमाप्रस्तुति, वराहपर्वतमा रहेका नदीहरूमा स्नान आदि कर्मको फलवर्णन, सुन्दरी र मोक्षवती नदीको सङ्गमको महिमा, कण्डुनामक म्लेच्छको कथा, हयग्रीव र कल्किअवतारको चर्चा एवं विष्णुधारानदी र विष्णुतीर्थको महिमावर्णन आदि यस अध्यायका मुख्य प्रतिपाद्य विषय हुन्।

अध्याय तेत्तीस – कामाचलको महिमा, हिमालयको शोभा, कामाख्या भगवतीको आराधनाको फल, योगधारानदीको महिमा, ब्रह्मपुत्र नदमा स्नान गरेको फल, त्यस क्षेत्रमा रहेका अनेक शिवलिङ्ग र कुण्डहरूको महिमा, भस्मपर्वतको चुचुरामा रहेको भस्मेश्वरलिङ्गको महिमा, सुकेशीनामक वैश्यपुत्रीको उपाख्यान, भगवतीको कृपाबाट वैश्यपुत्रीद्वारा देवपदप्राप्ति तथा कामाख्या भगवतीको महिमा आदि विषयको वर्ण यस अध्यायमा गरिएको छ।

अध्याय चौंतीस – वराहपर्वतको महिमा बताउने प्रसङ्गमा हिमशिखर, वनपङ्क्ति, झरना, पुष्पराशि, फल र नदीहरूको विस्तारपूर्वक वर्णन गर्दै कौशिकी र कोका नदीको महिमा, कौशिकी र कोकानदीको सङ्गम वराहक्षेत्रको महिमा, बँदेलका रूपमा अवतार लिनुहुने भगवान् वराहको चरित्र, वराहको उत्पत्तिप्रसङ्गमा विष्णु शर्मा ब्राह्मणको कथा, विष्णु शर्माद्वारा भगवान् वराहको दर्शन, फलस्वरूप ब्राह्मणलाई विष्णुलोकप्राप्ति आदि यस अध्यायका मुख्य प्रतिपाद्य विषय हुन्।

अध्याय पैंतीस – भगवान् वराहको यज्ञमूर्ति स्वरूपको वर्णन, भगवान् वराहको महिमनिरूपण, देवताहरूद्वारा वराहको स्तुति, वराहपर्वतको महिमा, आदिगङ्गाको दर्शन र स्पर्शनको फल, सप्तकोशीमा नुहाएको फल र देवताहरूद्वारा गरिएको सप्तकोशीमा स्नान, दान आदि कर्महरूको फलवर्णन यस अध्यायमा गरिएको छ।

अध्याय छत्तीस – भगवान् शिवकी प्रथम धर्मपत्नी सतीदेवीको कथा, पार्वतीको जन्म, सप्तर्षिहरूद्वारा पार्वतीको संस्कार, पार्वतीद्वारा शिवको आराधनाका लागि वनप्रस्थान, तपस्या नगर भनी उपदेश दिने आमा मेनाप्रति पार्वतीको वचन, शिवजीको तपस्या गर्ने सङ्कल्प गरेकी पार्वतीको कठोर व्रत, पार्वतीद्वारा एकभक्त उपवास, चान्द्रायण, पुष्पपत्र–भोजन र जलाहारसहितको तपस्या आदि यस अध्यायका मुख्य प्रतिपाद्य विषय हुन्।

अध्याय सैंतीस – पार्वतीको व्रतको वर्णन गर्ने प्रसङ्गमा पार्वतीले गरेको शिवपूजा, सप्तर्षिको पूजा, ब्राह्मणपूजा र गोदानको वर्णन, पार्वतीद्वारा पार्थिवलिङ्गको पूजा र रुद्रपूजा, आषाढमासदेखि मार्गशीर्षमासपर्यन्त पार्वतीले गरेको शिवपूजाको विवरणप्रस्तुति यस अध्यायका मुख्य प्रतिपाद्य विषय हुन्।

अध्याय अठ्तीस – पौष महिनादेखि जेठ महिनासम्मका हरेक पर्वहरूमा जप, ध्यान, उपवासका साथ पार्वतीले गरेको शिवजीको पूजा र तपस्याको वर्णन यस अध्यायमा मुख्य रूपले गरिएको छ।

अध्याय उनन्चालीस – पार्वतीको तपोमहिमा बताउने प्रसङ्गमा व्रत लिने दिन, पुण्यदिन, पुण्यपक्ष, पुण्यमास, पुण्यनक्षत्रहरूको उल्लेख गर्दै व्रत र उपवासपूर्वक गरिएको भगवान् शिवको आराधनाबाट प्राप्त हुने फल, शिवको पूजामा लागिरहने मानिसहरूका ब्रह्महत्या आदि पापहरूको पनि नाश हुने आदि विषय यस अध्यायमा समावेश गरिएका छन्।

अध्याय चालीस – सप्तकौशिकी नदीको उत्पत्ति, पार्वतीद्वारा सूर्य र अग्निका बीचमा रहेर गरिएको प्रचण्ड तपस्या, पार्वतीका पाउबाट निस्केका पसिनाका थोपाद्वारा नदीको उत्पत्ति, कुशिकनामक ऋषिद्वारा गरिएको तपस्या, जलदेवीको कृपाले हिमालयका शिखरहरूमा हिँडिरहेकी पार्वतीका पसिनाका थोपाहरूबाट अरू ६ वटा कोशी नदीहरूको उत्पत्ति भएको प्रसङ्ग र जलदेवीद्वारा महर्षि कुशिकलाई दिइएको वरदानको वर्णन नै यस अध्यायका मुख्य विषय हुन्।

अध्याय एकचालीस – कुशिक महर्षिको कठोर तपस्या थाहा पाएर शुम्भ र निशुम्भनामक दानवहरूद्वारा पनि तपस्याको आरम्भ, शुम्भ, निशुम्भ र रक्तबीजको कथा, शुम्भ आदिद्वारा आदिलिङ्गेश्वरको पूजा, तपस्या र भगवान् शिवबाट वरदान प्राप्ति, देवासुरयुद्ध, देवताहरूको पराजय, ब्रह्मा आदि देवताहरूद्वारा भगवतीको आराधना र स्तुति, कौशिकी देवीको प्रादुर्भाव, देवीको समीपमा दैत्येश्वर शुम्भद्वारा दूत पठाउने कार्य, देवी र दूतको संवाद, रिसाएको शुम्भद्वारा देवीलाई जगल्यमा समातेर ल्याउन दिइएको आदेश आदि विषय यस अध्यायमा समेटिएका छन्।

अध्याय बयालीस – कौशिकी नदीको महिमा बताउने प्रसङ्गमा शुम्भ, निशुम्भ, चण्ड, मुण्ड, रक्तबीज आदि दैत्यहरूका साथ भगवतीको युद्ध, शुम्भ र देवीको संवाद, भगवती दुर्गा र उहाँका अंशरूपमा रहेका देवीहरूको चरित्र, मातृकाहरूको दुर्गाभगवतीको अङ्गमा विलय, मातृकाहरूका कारण शक्ति बढाएकी देवीद्वारा शुम्भ आदि दैत्यहरूको संहार, शुम्भको वधद्वारा खुसी भएका देवताहरूबाट देवीको स्तुति र ब्रह्मा आदि देवताहरूको आ–आफ्नो धामका लागि प्रस्थान, यिनै विषयको वर्णन यस अध्यायमा गरिएको छ।

अध्याय त्रिचालीस – कामकूट पर्वतको महिमा निरूपण, कामकूट प्रान्तमा रहेका तीर्थहरूको महत्त्वप्रकाशन, तीर्थस्नान, दान आदि कर्महरूको फल, तीर्थस्नानादि शुभकर्मबाट भ्रूणहत्या आदि पापहरूको प्रायश्चित्त हुने तथ्यको प्रस्तुति, श्राद्धको परिचय एवं श्राद्धको फल र मार्कण्डेय ऋषिको कथा यस अध्यायमा रहेका छन्।

अध्याय चौवालीस – देवघाट तीर्थको महिमा बताउने सन्दर्भमा महर्षि गण्डकको चरित्र, जलदेवीको कृपा पाएर गण्डक ऋषिद्वारा शिवपदको प्राप्ति, मरीचि आदि सात ऋषिहरूको तपस्या, धर्मधारा, यशोधारा, विश्वधारा, शीतप्रभा,

रत्नधारा, सुवर्णाभा र कृष्णप्रभा नामका सातवटी गण्डकीहरूको महिमा, नारायणी नदीको महिमा, संक्षेपमा देवघाट तीर्थको महिमा, नारायणी नदीका किनारमा रहेका तीर्थहरूको परिचय, रूपकेतुनामक राजा र उनकी पतिव्रता पत्नीको चरित्र र पतिव्रताधर्मको महिमावर्णन यस अध्यायका मुख्य विषय रहेका छन्।

अध्याय पैंतालीस – भगवान् शिवले नीलकण्ठ नाम प्राप्त गर्नुभएको कथा, समुद्रमन्थनको कथा, शिवजीद्वारा कालकूट विषपान, विषपान गर्नाले अत्यन्त सन्तापमा पर्नुभएका शिवको गोसाइँकुण्ड क्षेत्रमा आविर्भाव, गोसाइँकुण्डबाट उत्पन्न भएकी त्रिशूली गङ्गाको वर्णन र त्यसमा स्नान, दान आदिको फलनिरूपण यस अध्यायका मुख्य प्रतिपाद्य विषय रहेका छन्।

अध्याय छयालीस – नीलकण्ठह्रद अर्थात् गोसाइँकुण्डको महिमा, गोसाइँकुण्डमा स्नान गरेको फल, गोसाइँकुण्डमा स्नान गर्न जम्मा भएका मरीचि आदि सात ऋषि, वशिष्ठ र सनक आदि महर्षिहरू एवं मार्कण्डेय ऋषिको परिचय, देवताहरूद्वारा जलदेवीको स्तुति, भगवान् नीलकण्ठ शिवको आविर्भाव र तत्पश्चात् देवताहरूको आ–आफ्ना धामका लागि प्रस्थान जस्ता यस विषय अध्यायमा वर्णित छन्।

अध्याय सैंतालीस – नीलकण्ठ भगवान्को महिमा, गोसाइँकुण्डको विस्तृत वर्णन, गोसाइँकुण्डमा स्नान दान गर्दा मोक्ष आदि फल प्राप्त हुने जस्ता विषयमा यस अध्यायमा प्रकाश पारिएको छ।

अध्याय ठ्चालीस – गोसाइँकुण्डबाट प्रकट भएकी त्रिशूलीको परिचयका क्रममा त्रिशूलपर्वतको वर्णन, भगवान् शिवका नीलकण्ठ आदि नामहरूको तात्पर्यनिरूपण यस अध्यायका मुख्य विषय हुन्।

अध्याय उनन्पचास – यशोधारानदीको महिमाको प्रसङ्गमा कश्यपका छोरा त्रिपुर आदि दैत्यहरूको वर्णन, त्रिपुर दैत्यहरूद्वारा ब्रह्माजीको तपस्या, ब्रह्माजीको वरबाट मात्तिएका दैत्यहरूद्वारा स्वर्गमा आक्रमण र स्वर्गमाथि विजय, त्रिपुरद्वारा पीडित भएका देवताहरूलाई शिवजीद्वारा आश्वासन, देवता र दानवको युद्ध, शिवजीद्वारा त्रिपुरहरूको वध, त्रिपुरवधका कारण प्रसन्न भएका देवताहरूद्वारा भगवान् शिवको स्तुति र शिवजीको आज्ञाबाट देवताहरूको आ–आफ्नो धामका लागि प्रयाण आदि विषय यस अध्यायमा समाहित छन्।

अध्याय पचास – हिरण्यकशिपुद्वारा ब्रह्माजीको तपस्या र आराधना, वरप्राप्ति, दैत्यराज हिरण्यकशिपुद्वारा विश्वधारा गण्डकीमा स्नान, हिरण्यकशिपुद्वारा स्वर्गमा लुटमार, देवताहरूलाई जितेर स्वर्गलोकप्राप्ति, विश्वधारा गण्डकीमा नुहाएको प्रभावले जलदेवीको कृपा हुँदा भगवान् विष्णुद्वारा नरसिंहरूप धारण, नरसिंहका साथ दैत्यहरूको युद्ध र हिरण्यकशिपुको वध यस अध्यायका प्रतिपाद्य विषय हुन्।

अध्याय एकाउन्न – शीतप्रभा गण्डकीको वर्णनक्रममा गाधिका छोरा विश्वामित्रको परिचय, विश्वामित्रद्वारा पार्थिवलिङ्गको पूजा र कठोर तपस्या, आकाशवाणीद्वारा विश्वामित्रलाई शीतप्रभा गण्डकीमा स्नान गर्नाले नै तिमी क्षत्रियपन छाडेर ब्राह्मण हुनेछौ भन्ने सन्देशको प्रसारण र ब्राह्मणजातिको महत्त्वप्रतिपादन जस्ता विषयमा यस अध्यायमा चर्चा गरिएको छ।

अध्याय बाउन्न – रत्नधारा नदीको वर्णन गर्ने क्रममा धर्मकेतु राजाका सातवटी कन्याद्वारा सँगै रत्नधारा गण्डकीमा निर्वस्त्रस्नान, यसरी स्नान गर्ने ती राजकुमारीहरूको स्वरूप देखेर रिसाएका दुर्वासा ऋषिद्वारा तिनीहरूलाई वेश्या होऊ भन्ने सराप प्रदान, यसरी सराप पाएपछि आफ्नो सरापलाई मुक्त गर्न प्रार्थना गर्ने ती सातवटी कन्यालाई रत्नधारा गण्डकीमा नुहाएर शिवपार्वतीको पूजा गरेपछि व्रत धारण गर अर्को जन्ममा अप्सरा हुनेछौ र स्वर्गमा बस्न पाउनेछौ भन्ने वरदानप्राप्ति आदि विषय यस अध्यायमा समाविष्ट छन्।

अध्याय त्रिपन्न – तारकासुरद्वारा दुग्धप्रभा गण्डकीमा स्नान, ब्रह्माजीको आराधना एवं कठोर तपस्या, तारकासुरको तपस्याबाट खुसी भएका ब्रह्माजीद्वारा त्यसलाई तिमी कसैबाट मर्ने छैनौ भन्ने वर प्रदान, वरबाट मातेको तारकासुरद्वारा स्वर्गमा आक्रमण, पराजित भएका देवताहरूद्वारा शिवजीको आराधना, त्यसपछि शिवजीको तेजका रूपमा कुमारको जन्म भई उनै कुमारद्वारा तारकासुरको वध हुने तथ्यको प्रतिपादन, कुमारजन्म र देवताहरूको कुमारलाई नायक बनाएर तारकासुरको वधका लागि प्रस्थान यस अध्यायका मुख्य विषय हुन्।

अध्याय चौवन्न – देवता–दानवको भयङ्कर युद्ध, इन्द्रमहाराजद्वारा प्रयोग गरिएको ब्रह्मास्त्रसँग डराएर तारकासुर तथा उसका सेनाको भागाभाग र क्रौञ्चपर्वत नाघेर भागिरहेको तारकासुरको कुमारद्वारा वधजस्ता विषय यस अध्यायका मुख्य विषय हुन्।

अध्याय पचपन्न – कृष्णप्रभा गण्डकीको महिमाका प्रसङ्गमा जालन्धरकी पत्नी वृन्दाको पतिव्रताधर्म च्युत गराएका कारण वृन्दाद्वारा भगवान् विष्णुलाई ढुङ्गा बन्नुपरोस् भन्ने सराप प्रदान, सरापका कारण अत्यन्त दुःखी भएका विष्णुद्वारा कालीगङ्गानदीमा स्नान गरी शालग्रामशिलाका रूपमा आविर्भाव भएको कथा, शालग्रामशिलाका चक्रहरूको निरूपण, विभिन्न चक्र भएका शालग्रामहरूमा प्रतिबिम्बित हुने देवताहरूको वर्णन, कुन शालिग्राम पूजनीय हुन्छन् र कुन हुँदैनन् भन्ने तथ्यको विस्तारपूर्वक वर्णन, शालग्रामशिला भगवान् विष्णुकै रूप हुन् भन्ने शास्त्रीय तथ्यको निरूपण यस अध्यायका मुख्य विषय हुन्।

अध्याय छपन्न – मुक्तिनाथ तीर्थमा ब्रह्माजीले गरेको तपस्याको कथा, 'मुक्तिक्षेत्र' शब्दको तात्पर्य, रुद्र अग्निका रूपमा, विष्णु जलका रूपमा र ब्रह्मा यजमानका रूपमा उपस्थित हुने मुक्तिक्षेत्रमा यात्रा, दान, स्नान आदिको फल यस अध्यायमा बताइएका छन्।

अध्याय सन्ताउन्न – बद्रीनाथ तीर्थको महिमावर्णनको प्रसङ्गमा भगवान् विष्णुको तपस्याको वर्णन, पार्वतीको पसिनाबाट उत्पन्न भएको तप्तकुण्डको परिचय, पाशुपतक्षेत्रको सङ्क्षिप्त परिचय, नारायणका साथी नरको कथा, विष्णुका मित्र बनेर रहेका नरको विष्णुका साथ पशुपति भगवान्को दर्शन गर्न नेपाल प्रस्थान, नर र नारायणद्वारा बद्रीनाथमा तपस्या र अलकनन्दा नदीको महिमावर्णन यस अध्यायका मुख्य विषय हुन्।

अध्याय अन्ठाउन्न – आकाशबाट धर्तीतर्फ आइरहेका नारदमुनि सहसा हिमालयमा जानु, नारदद्वारा हिमालयको राजदरबारमा आफ्ना सङ्गिनीहरूका साथ खेलिरहेकी पार्वतीको दर्शन गर्नु, पार्वतीको अपूर्व सौन्दर्य देखेर चकित भएका नारदजीको मनमा यी सुन्दरी त भगवान् नारायणकी पत्नी हुन योग्य छन् भन्ने विचार उठेपछि बद्रीनाथको यात्रा गर्नु, त्यहाँ गएर तपस्या गरिरहनुभएका नारायणलाई सुन्दरीको विषयमा निवेदन गर्नु जस्ता विषय यस अध्यायमा समेटिएका छन्।

अध्याय उनन्साठी – नारायणलाई कन्यादान गर्न तयार भएका पिता हिमालयलाई देखेर पार्वतीद्वारा विष्णुसँग विवाह नगर्ने इच्छा व्यक्त गर्नु, हिमालयले नमानेपछि पार्वतीको विलाप, पार्वतीद्वारा सखीका समक्षमा भगवान् शङ्करलाई नै पति बनाउन आफूले गरेको प्रतिज्ञा सुनाउनु, सखीको सल्लाहअनुसार पार्वतीद्वारा तपस्याका लागि वनमा प्रस्थान, ब्रह्मनदीमा नुहाएर भगवान् शङ्करको स्तुति गरी तपस्या आरम्भ, पार्वतीको तपस्याबाट सन्तुष्ट हुनुभएका भगवान् शिवको पार्वतीकै अगाडि प्रादुर्भाव र पार्वतीद्वारा हजुर मेरा पति हुनुहोस् भनी वरदानको याचनाजस्ता विषयमा यस अध्यायमा प्रकाश पारिएको छ।

अध्याय साठी – पार्वती एकाएक हराएपछि दुःखी भएका हिमालयद्वारा पार्वतीको खोजी, पार्वतीको दर्शन गरेपछि पार्वतीलाई घर फर्किन अनुरोध, पार्वतीको गृहागमन, मेनाले पार्वतीको दर्शन गरी आलिङ्गन गरेर किन तिमी वनमा आयौ भनी यथार्थ रहस्य बताउन अनुरोध, पार्वतीद्वारा मेरो शरीर शिवजीको चरणमा समर्पित भइसकेको छ, त्यसकारण तपाईंहरूले मलाई नारायणका हातमा नदिनुहोस् भन्ने प्रार्थना, मरीचि आदि ऋषिहरूले हिमालयको घरमा गएर भगवान् शिवको महिमा बताई पार्वती शिवजीलाई नै दिन गरेको अनुरोध, शिवजीको वरयात्रा, शिव र पार्वतीको विवाह इत्यादि विषय यस अध्यायमा प्रस्तुत गरिएका छन्।

अध्याय एकसट्ठी – दैत्यराज बलिद्वारा स्वर्गमा विजय प्राप्त गर्न त्रियुगीनारायणतीर्थमा तपस्या गर्नु, उनको तपस्याबाट डराएका इन्द्रमहाराज विष्णुको शरणमा जानु, भगवान् विष्णुद्वारा इन्द्रलाई आश्वासनप्रदान र इन्द्रकै रक्षाका निमित्त वामन अवतारका रूपमा विष्णुको प्रादुर्भाव, बलिराजाको यज्ञमा भगवान् वामनबाट बटुरूप धारण गरेर तीन पाइला जमिनको याचना, जमिन दिनका लागि सङ्कल्प गरिसकेपछि भगवान् वामनद्वारा विराट् रूप धारण गरी बलिको वञ्चना गर्नु, आफ्नो प्रतिज्ञामा चुकेका कारण वामनद्वारा बलिलाई पाताललोकमा जान आदेश र बलिद्वारा भगवान्को आज्ञा स्वीकार इत्यादि विषयको वर्णन यस अध्यायमा गरिएको छ।

अध्याय बैसट्ठी – त्रिविक्रम तीर्थमा स्नान गरेको फलवर्णन, अलकनन्दा र भागीरथीको महत्त्व, देवप्रयागतीर्थको परिचय, त्यस पुण्यभूमिमा स्नान पूजा, होम आदि गरेको फलप्रतिपादन, कामप्रयागतीर्थको संक्षिप्त परिचय र त्यस तीर्थमा गरिएका पुण्यकर्मको फलका साथै अनेक तीर्थको चर्चा यस अध्यायका मुख्य विषय हुन्।

### २.२.४ नेपालमाहात्म्य–प्रकरण

अध्याय त्रिसट्ठी – मुनितीर्थको महिमावर्णनको प्रसङ्गमा रम्भानामकी स्वर्गकी अप्सराद्वारा महर्षि दुर्वासाको सत्कार, मुनितीर्थमा स्नानका लागि देवता र दैत्यहरूको आगमन, आफ्नो अपमान गरेका कारण रिसाएका दुर्वासाद्वारा देवता र दानवलाई तिमीहरूको परस्परमा युद्ध हुनेछ भनी सराप दिनु जस्ता विषय यस अध्यायमा समेटिएका छन्।

अध्याय चौसट्ठी – बलिद्वारा अभिप्रेरित दैत्यहरूले दैत्यवंशको विजयका लागि विष्णुको आराधना, मुचुकुन्दको भनाइअनुसार दैत्यको हिमालयको काखमा यात्रा, विष्णुको तपस्या, भगवान् रुद्रको आज्ञाबाट शुद्धोदनका पुत्रका रूपमा मायादेवीको गर्भबाट बुद्धको अवतार, भगवान् बुद्धको स्वरूप र उपनयन आदि संस्कारको निरूपण यस अध्यायका मुख्य विषय हुन्।

अध्याय पैंसट्ठी – भगवान् बुद्धको ज्ञानतीर्थयात्रा, ज्ञानतीर्थमा रहेका तपस्वी दैत्यहरूको हृदयमा बुद्धको दर्शनका कारण उल्लास र उमङ्ग, बुद्धद्वारा वर माग्नका लागि प्रेरित दैत्यहरूबाट स्वर्गराज्यको याचना, स्वर्गराज्यको याचनाका कारण बुद्धको हृदयमा चिन्ता, बुद्धद्वारा तपस्वी दैत्यहरूलाई मायाको प्रयोगद्वारा मोहित तुल्याई तिनलाई उद्बोधन गर्दै उनीहरूका

समक्षमा विषयसुख, राज्यसम्पत्ति आदि विषयको अनित्यता र अहिंसाधर्मको सर्वोत्तमताको सिद्धान्तको प्रतिपादन गर्नु जस्ता विषय यस अध्यायमा समेटिएका छन्।

अध्याय छैसट्ठी – लिङ्गतीर्थको महिमाका प्रसङ्गमा ब्रह्मतीर्थको वर्णन, ब्रह्मतीर्थमा गरिएका स्नान, दान आदिको फलनिरूपण, विभिन्न पर्वहरूमा गरिएका सत्कर्मबाट पाइने उत्तम लोकहरूको वर्णन, माघमासमा गरिने स्नानको महिमा, व्यङ्गुनामक आदिवासीको उपाख्यान जस्ता विषयमा यस अध्यायमा चर्चा गरिएको छ।

अध्याय सतसट्ठी – हरिदास ब्राह्मणको तपस्या, ब्राह्मणद्वारा लिङ्गतीर्थमा स्नानपूर्वक शालग्रामशिलाको पूजन, ब्राह्मणद्वारा राक्षसका मुखमा तीर्थजल छिट्ने कार्य, शालग्रामजलका प्रभावले राक्षसयोनि छाडी राजाका रूपमा आविर्भाव, राजाद्वारा ब्राह्मणको प्रशंसा, राजा र हरिदासको संवाद, आत्मवृत्तान्त र शालग्रामको जलको महिमाबारेको चर्चा यस अध्यायका मुख्य विषय हुन्।

अध्याय अठसट्ठी – धर्मतीर्थको महिमा बताउने प्रसङ्गमा विरजा र नारदको संवाद, सुवर्णशेखर पर्वतको वर्णन, धर्मको स्वरूपनिरूपण, धर्म र अधर्मको विवाद, त्यस बीचमा ब्राह्मणको आगमन, ब्राह्मणद्वारा विवाद गरिरहेका धर्म र अधर्मलाई तिमीहरू दुबैले नदीको रूप लिनेछौ भनी सराप प्रदान, सरापबाट डराएका तिनीहरूले ब्राह्मणसमक्ष सरापबाट मुक्त हुन क्षमायाचना, त्यसपछि धर्म र अधर्मको तीर्थका रूपमा परिणति, धर्मतीर्थमा स्नान, दान आदिको फलवर्णन यस अध्यायका प्रमुख विषय हुन्।

अध्याय उनान्सत्तरी – नेपाल क्षेत्रको महिमा, मणिमती आदि अनेक नदीहरूको महिमा, गोकर्णेश्वर आदि लिङ्गहरूको वर्णन, गुह्येश्वरीको महिमा, हिमालयको तपस्या, हिमालयद्वारा हिमवदीश्वरलिङ्गको स्थापना, मेनाका साथ लिङ्गपूजन, नेमुनिको कथा, नेमुनिद्वारा देवीको तपस्या, देवीबाट नेमुनिलाई वरप्रदान आदि यस अध्यायका मुख्य प्रतिपाद्य विषय रहेका छन्।

अध्याय सत्तरी – देवक्षेत्रका रूपमा नेपालको महिमा निरूपण, हिमालयलाई पर्वतराजको पदवी प्रदान, हिमकूट, सुवेल, पारियात्र, मृगेन्द्र, मुञ्जवद्, दोलाद्रि, सिद्धाश्रम, कालाद्रि, ऋष्यवान्, विशालाद्रि, शक्रमार्ग आदि पर्वतहरूको वर्णन, पाशुपतक्षेत्रको सर्वोत्तम महिमाप्रकाशन, नेपालका अनेकथरी तीर्थवर्णनका प्रसङ्गमा कुशेश्वर आदि लिङ्गहरूको महत्त्वप्रकाशन यस अध्यायका मुख्य विषय हुन्।

अध्याय एकहत्तर – पाशुपतक्षेत्रभित्रका पुण्यस्थलहरूको वर्णन, गोदावरीको महातीर्थत्वप्रतिपादन, पाशुपतक्षेत्रको महिमाका साथ मार्कण्डेय आदि ऋषिहरूको तपस्याको वर्णन, मृगस्थलीको प्रशंसा, माहेश्वरी आदि देवीहरू र भैरव आदि देवताहरूका साथै राजराजेश्वरीको वर्णन, पाशुपतीपुरीको सर्वोत्तम महत्त्वप्रकाशन आदि यस अध्यायमा समेटिएका मुख्य विषय हुन्।

अध्याय बहत्तर – पाशुपतक्षेत्रको उत्तम भुवनहरूभन्दा पनि सर्वाधिक महत्त्व रहेको तथ्यनिरूपण, पाशुपती पुरीको उत्तरकाशीका रूपमा वर्णन, वाग्वती नदीमा नुहाएर पशुपतिको पूजा गरेको फलसम्बन्धी चर्चा, पशुपति नाममहिमाजस्ता विषयको वर्णन यस अध्यायमा गरिएको छ।

अध्याय त्रिहत्तर – नेपालको महिमा बताउने सन्दर्भमा उडीसाका राजा देवीदासको कथा, जैगीषव्यमुनिद्वारा परमात्माको नामजप नै सनातन धर्म हो भन्ने तथ्यको निरूपण, तपस्याको प्रशंसा, विष्णुभक्त योगीको वर्णन, जैगीषव्यद्वारा विष्णुभक्तलाई नेपालक्षेत्रको महिमाप्रतिपादन, उडीसाका राजाको योगीहरूका साथ नेपाल आगमन, योगीहरूद्वारा नेपालक्षेत्र विष्णुकै स्वरूप हो भन्ने तथ्यको उपदेश, योगीहरूद्वारा विष्णु र भगवतीको स्तुति आदि यस अध्यायका मुख्य विषय रहेका छन्।

अध्याय चौहत्तर – पशुपतिको आविर्भावको प्रसङ्ग, ब्रह्मा र विष्णुको बीचमा म नै ठूलो भन्ने विवाद, त्यसै प्रसङ्गमा महाशिवको उत्पत्ति, महाशिवद्वारा ब्रह्मा र विष्णुको अहङ्कार तोड्नका लागि ज्योतिर्लिङ्गका रूपमा आविर्भाव, बलिरहेको लिङ्गको स्वरूप देखेर भयभीत भएका ब्रह्मा र विष्णुको पलायन र सोही क्रममा भएको आकाशवाणीको विषयको चर्चा यस अध्यायका मुख्य प्रतिपाद्य विषय हुन्।

अध्याय पचहत्तर – लिङ्गको फेद भेटाउन विष्णुको पातालयात्रा, लिङ्गको टुप्पो भेटाउन ब्रह्माजीको माथिल्लो लोकमा यात्रा, ब्रह्माद्वारा कामधेनुसँग ज्योतिर्लिङ्गको वृत्तान्त बताई आफूलाई सह्योग गर्न अनुरोध, ब्रह्माजीलाई सह्योग गरेका कारण कामधेनु, केतकी आदिलाई सराप पर्नु जस्ता विषय यस अध्यामा समेटिएका छन्।

अध्याय छ्यहत्तर – आकाशवाणीद्वारा चकित भएका ब्रह्मा र विष्णुलाई ज्योतिस्वरूपको महिमा प्रतिपादन, ब्रह्मा र विष्णुद्वारा स्तुति गरिएका ज्योतिस्वरूप भगवान् शिवद्वारा सूक्ष्म रूप धारण गरी ॐ नमः लिङ्गदेहाय इत्यादि मन्त्रद्वारा भगवान् शिवको स्तुति, भगवान् शिवद्वारा आफू अनादि, अनन्त, अपरिमेय, रूपरहित भएको तथ्य प्रकाशन, शिवभक्तिको महिमा, शिवजीको कृपाबाट ब्रह्मालाई सृष्टिको कार्य र विष्णुलाई जगत्को पालन गर्ने कार्य गर्न निर्देशनजस्ता विषयको वर्णन यस अध्यायमा गरिएको छ।

अध्याय सतहत्तर – हिमालय आदि पर्वत र सात किसिमका द्वीपहरूको उत्पत्ति, नेपाल खाल्डोमा रहेको पानीलाई श्रीगणेशद्वारा शोषण, चन्द्र र सूर्यद्वारा संसारको रक्षा, सातै द्वीपहरूमा ब्रह्माजीद्वारा प्राणीहरूको सृष्टि, नेपालपुरी अर्थात् पाशुपती पुरी देवताद्वारा संरक्षित दिव्यधाम भएको तथ्यनिरूपण, नेपालक्षेत्रको शोभावर्णन, पशुपतिको स्थावरलिङ्गोत्पत्तिको इतिहास र भगवान् पशुपतिको महिमावर्णन यस अध्यायका मुख्य विषय रहेका छन्।

अध्याय अठहत्तर – भगवान् शिवको पशुरूपधारण, मुञ्जवान् पर्वतको शोभा र शिवजीको त्यहाँ निवास भएको तथ्यप्रकाशन, मृगस्थलीमा सुबाहुनामक म्लेच्छको निवास, सुबाहुले मृत्युको अवसरमा वाग्वतीको जलपान गरेका कारण अर्को जन्ममा ब्राह्मणशरीरप्राप्ति र नन्दीद्वारा भगवान् शिवको सेवा गरी गणेश्वरपद प्राप्त गरेको कथा आदि विषयमा यस अध्यामा चर्चा गरिएको छ।

अध्याय उनासी – श्लेष्मान्तक वनको महिमा, गुह्येश्वरीपीठ र पशुपतिको स्थावरलिङ्गसहित रहेको श्लेष्मान्तक वनको अपूर्वमहिमा, सह्याचलको शोभावर्णन, वाग्वतीको परमपावनता, श्लेष्मान्तकनामक वनमा नागराजद्वारा गरिएको हजार वर्षसम्मको शिवाराधनाबाट प्रसन्न हुनुभएका शिवद्वारा श्लेष्मान्तक बनमा आई नागराजलाई वरप्रदान, नागराजद्वारा शिवपार्वतीको स्तुति, भगवान्को पाउको सेवा गर्न पाऊँ भन्ने वर याचना गर्ने नागराजलाई शिवद्वारा वरप्रदान आदि यस अध्यायका मुख्य विषय हुन्।

अध्याय असी – भगवान् शिवद्वारा मृगरूपधारण, मृगस्थलीभ्रमण, मार्गशीर्ष चतुर्दशीका दिन मृगस्थलीको वनमा मृगरूप धारण गर्नुहुने शिवको स्वरूप र सौन्दर्यको वर्णन, भगवान् शिवको दिव्य सौन्दर्यले परिपूर्ण स्वरूप देखेर मृगस्थलीमा बस्ने मृगहरूको प्रसन्नता र मृगरूप शिवका साथमा क्रीडा, सिद्धाश्रम, मृगस्थलीका वन, लता, वृक्ष, औषधि र पुष्पसम्पदाको वर्णन इत्यादि यस अध्यायका मुख्य विषय हुन्।

अध्याय एकासी – स्वर्ग छाडेर पृथिवीतलमा आउनुभएका भगवान् शिवको अभावमा इन्द्र आदि देवताहरूको असन्तोष, ब्रह्माजीका सामु पुगी असन्तोषको प्रस्तुति, शिवजीको खोजी गर्नुपर्छ भन्ने देवताहरूको निर्णय, शिवको खोजीमा विभिन्न लोकहरूको यात्रा, पृथिवीलोकका साथै द्वीपहरूमा शिवको खोजी गर्दै हिँडेका देवताहरूको नन्दीसँग भेट, समाधिद्वारा ब्रह्माजीले शिवको दर्शन गर्नु र ब्रह्माजीको आज्ञाबाट देवताहरूको मृगस्थलीयात्रा जस्ता विषयको चर्चा यस अध्यायमा गरिएको छ।

अध्याय बयासी – मृगस्थलीको वनमा देवताहरूद्वारा मृगसमूहका बीचमा रहेका मृगरूपधारी शिवको दर्शन, शिवलाई प्रणाम गरी शिवका रूपमा रहेका मृगलाई समाउने प्रयास, बलप्रयोग गरी मृगलाई रोक्न खोज्दा ब्रह्मा, विष्णु र इन्द्रको हातमा मृगको सिङका टुक्राहरू रहनु, इन्द्रले सिङको टुप्पो, ब्रह्माले माझको भाग र विष्णुले फेदको भाग ग्रहण गर्नु, देवताहरूको बीचमा विवाद, भगवान् शिवको स्तुतिजस्ता विषयको चर्चा यस अध्यायमा भएको छ।

अध्याय त्रियासी – भगवान् शिवका दिव्यसहस्रनामको उल्लेख, दिव्यसहस्रनामपाठको सर्वोत्तम फलनिरूपण, शिवस्तुति, शिवका विशेष नामहरूको व्याख्या आदि यस अध्यायका मुख्य प्रतिपाद्य विषय हुन्।

अध्याय चौरासी – ब्रह्मा आदि देवताहरूद्वारा समाउन खोज्दा भाग्नुभएका हरिणेश्वर भगवान् शिवको आकाशगमन, आकाशबाट धर्मस्वरूपको उपदेश, सिङका टुक्राहरूलाई लिङ्गका रूपमा स्थापना गर्न शिवको आज्ञा, भगवान् शिवद्वारा भविष्यका घटनाहरूको उपदेश, नागसरोवरको महिमानिरूपण आदि यस अध्यायका मुख्य विषय हुन्।

अध्याय पचासी – ब्रह्माजीको अनुरोधअनुसार हरिणेश्वर भगवान्द्वारा गोकर्णक्षेत्रको महिमावर्णन, विष्णुको हातमा रहेको सिङको फेदलाई पातालमा स्थापना गर्न र शृङ्गेश्वरलिङ्गका रूपमा त्यसको पूजा गर्न आदेश, इन्द्रको हातमा रहेको सिङको टुप्पोलाई स्वर्गमा स्थापना गर्न तथा ब्रह्माजीको हातमा रहेको सिङको मध्यभागलाई चन्द्रभागानदीको तटमा स्थापना गर्न आदेश, कुबेरको तपस्या, लङ्काराज्यको प्राप्ति, रावणको तपस्या, कुबेर र रावणको युद्ध, युद्धमा कुबेरको पराजय जस्ता विषयको निरूपण यस अध्यायमा गरिएको छ।

अध्याय छ्यासी – लङ्काराज्यमा रावणको अभिषेक, रावणद्वारा लङ्कामा गोकर्णेश्वरलिङ्गको स्थापना, दक्षिण गोकर्णेश्वरको वर्णन र पातालमा रहेका हरिणेश्वरलिङ्गको महिमाप्रकाशन यस अध्यायका मुख्य विषय रहेका छन्।

अध्याय सतासी – प्रजाको सृष्टि गर्न चाहने ब्रह्माद्वारा शिवको आराधना, गङ्गाजीको स्मरण, जलका रूपमा गङ्गाजीको प्रादुर्भाव, ब्रह्माजीद्वारा जललाई वाग्वती नामकरण, गरुडद्वारा वाग्वतीको तटमा शिवजीको आराधना, गरुडको नागहरूका साथमा युद्ध, नागहरूको पराजय र अनन्तनाग विष्णुका स्वरूप भएकाले उनी कसैद्वारा पनि मारिने छैनन् भन्ने शिवको उपदेशजस्ता विषय यस अध्यायमा समेटिएका छन्।

अध्याय अठासी – शङ्खासुरको तपस्या, रुद्रधारा नदीको महिमा, शङ्खासुर रुद्रधारामा बसेकाले त्यस तीर्थको शङ्खमूल नामबाट प्रसिद्धि, मणिमती नदीको आविर्भाव र महिमाको वर्णन, कोटीश्वर शिवलिङ्गको महिमा र उनको पूजाको वर्णन यस अध्यायका मुख्य विषय रहेका छन्।

अध्याय उनान्नब्बे – तीर्थयात्रीले तीर्थाटनका निमित्त सर्वप्रथम मनसा सङ्कल्प गर्नुपर्छ भन्ने तथ्यको निरूपण, आर्यातीर्थ र पितामहतीर्थको महिमा, तीर्थाटन गर्दा सवारी साधनको प्रयोग गर्न निषेध, सङ्कल्पविधि र न्यासविधिको वर्णन, तीर्थहरूमा अनेक थरीका पापहरण गर्ने शक्ति रहेको तथ्यप्रतिपादन, नारीहरूलाई कहिल्यै पनि ताडन गर्न हुँदैन भन्ने उपदेश र प्रभावतीको कथाको प्रस्तुति यस अध्यायका मुख्य विषय हुन्।

### २.२.५ चौसठ्ठीलिङ्ग–प्रकरण

अध्याय नब्बे – विरूपाक्षनामक ब्राह्मणको परिचय, विरूपाक्ष र नेमुनिको भेट, नेमुनिको आदेशबाट विरूपाक्षद्वारा कोशी नदीमा स्नान–दान, विरूपाक्षको अनुरोधअनुसार नेमुनिद्वारा आदिलिङ्ग र दुर्गातीर्थको महिमानिरूपण इत्यादि यस अध्यायका मुख्य विषय हुन्।

अध्याय एकान्नब्बे – दुर्गातीर्थमा स्नान गरेर विरूपाक्षको कुष्ठरोगबाट मुक्ति, नेमुनि र विरूपाक्षको तीर्थयात्राक्रममा भीमेश्वरको वर्णन, देवीद्वारा शुम्भवध भएको कथा, भीमेश्वरलिङ्गको पूजामहिमा आदि यस अध्यायमा समाविष्ट विषय हुन्।

अध्याय बयान्नब्बे – नेमुनिका साथ विरूपाक्षको काफीश्वरशिवलिङ्गको दर्शन, काफीनामक मुनिको चरित्रकथा, काफीश्वरमहालिङ्गको महिमा, कुरूपानामक म्लेच्छपत्नीको कथा इत्यादि विषय यस अध्यायमा समेटिएका छन्।

अध्याय त्रियान्नब्बे – कश्यप ऋषिको तपस्या, कश्यपेश्वरलिङ्गको महिमा, कश्यप र म्लेच्छको संवाद, म्लेच्छद्वारा कश्यपेश्वरशिवलिङ्गको पूजा, कालान्तरमा दिवङ्गत म्लेच्छद्वारा सार्वभौमपदको प्राप्ति र शिवजीको आराधनाबाट जीवन्मुक्ति इत्यादि विषयको चर्चा यस अध्यायमा गरिएको छ।

अध्याय चौरान्नब्बे – कान्तितीर्थको महिमा, विरूपाक्षको कान्तितीर्थयात्रा र स्फटिकेश्वरशिवलिङ्गको पूजा, स्फटिकेश्वरको महिमा, धर्मदासको कथा, धर्मदासद्वारा शिवसायुज्यप्राप्ति, स्फटिकेश्वरलिङ्गको पूजाको फलवर्णन आदि यस अध्यायका मुख्य विषय रहेका छन्।

अध्याय पन्चान्नब्बे – विरूपाक्षद्वारा चण्डेश्वरलिङ्गको दर्शनार्थ चण्डेश्वरयात्रा, चण्डेश्वरको महिमावर्णन, च्यवन ऋषिको कथा, च्यवनद्वारा गरिएको तीर्थाटन र लिङ्गपूजाविषयक वर्णन, च्यवनको सद्गति र चण्डासुरको कथा, चण्डासुरको पराक्रम, देवी र चण्डासुरको युद्ध, देवीद्वारा चण्डासुरको वध आदि यस अध्यायका उल्लेख्य विषय रहेका छन्।

अध्याय छयान्नब्बे – उग्रतीर्थको वर्णन, धनेश्वरलिङ्गको महिमा, शिवदासब्राह्मणको कथा, शिवदासद्वारा भगवान् शिवको आराधना, तपस्यासिद्धि र शिवदासको मुक्ति इत्यादि यस अध्यायमा वर्णित विषय हुन्।

अध्याय सन्तान्नब्बे – विकटेश्वरलिङ्गको वर्णन, विकटेश्वरको उत्पत्तिकथा, विकटनामक म्लेच्छको कथा, विकटद्वारा शिवजीको आराधना, शिवजीबाट विकटलाई शिवगणमा सामेल गराइने वरप्रदान, विकटेश्वरलिङ्गको पूजा–आराधनाको फलप्रकाशन इत्यादि यस अध्यायका मुख्य विषय हुन्।

अध्याय अन्ठान्नब्बे – विरूपाक्षको शचीतीर्थयात्रा, इन्द्रेश्वरलिङ्गको पूजा, मिथिलानिवासी गौतमनामक तपस्वी र उनकी पत्नी अहल्याको कथा, अहल्याको सुन्दरता देखेर इन्द्रको मोह, इन्द्रद्वारा गौतमको रूप धारण, अहल्याको मोह र इन्द्रद्वारा अहल्याको पतिव्रताधर्मको नाश, गौतमद्वारा इन्द्र र अहल्यालाई सराप इत्यादि यस अध्यायमा समेटिएका मुख्य विषय हुन्।

अध्याय उनान्सय – विरूपाक्षको नेमुनिका साथ गन्धर्वतीर्थयात्रा, भालेश्वर महालिङ्गको पूजा, नेमुनिद्वारा विरूपाक्षलाई सतीले देहत्याग गरेको कथा सुनाउनु, सुमुखनामक गन्धर्वको कथा, गालव ऋषि र सुमुखको संवाद, भालेश्वरलिङ्गको पूजाका प्रभावले सुमुखको वनेचरयोनिबाट मुक्ति, भालेश्वरलिङ्गको पूजाको थप महिमा प्रकाशन आदि यस अध्यायका मुख्य विषय रहेका छन्।

अध्याय एकसय – तीर्थाटनका लागि विरूपाक्षको नेमुनिका साथ दक्षिणदिशाको यात्रा, गुप्तेश्वरको महिमा, रुद्र र वृषभासुरको कथा, गुप्तेश्वरको आविर्भावप्रसङ्ग, ब्रह्मराक्षसका रूपमा रहेका ब्राह्मणको कथा, ब्रह्मराक्षसद्वारा सिद्धतीर्थमा स्नान तथा ब्राह्मणको शिवदासका रूपमा परिणति र गुप्तेश्वरलिङ्गको महिमाको चर्चा यस अध्यायमा रहेका मुख्य विषय हुन्।

अध्याय एकसय एक – तिलेश्वरको महिमा, आङ्गिरस ब्राह्मणको कथा, भारतीको कथाको प्रसङ्गमा भार्गवद्वारा भारतीलाई नदी होऊ भन्ने सराप, तिलेश्वर भगवान्का कृपाले नदीको सरस्वतीका रूपमा प्रसिद्धि, मनश्रीतीर्थको महिमा, मनोहरानदी र रुद्रकुण्डलाई तीर्थराजका रूपमा रहने वरदान, रुद्रकुण्डको महिमा आदि विषयको वर्णन यस अध्यायमा गरिएको छ।

अध्याय एकसय दुई – चम्पकेश्वरलिङ्गको उत्पत्तिकथा, मनुनामक ब्राह्मणको वृत्तान्त वर्णनका प्रसङ्गमा मनुद्वारा गरिएको तिलेश्वर तथा चम्पकेश्वरलिङ्गको पूजा, चम्पकेश्वरको महिमा, विशङ्कुनामक म्लेच्छको कथा, म्लेच्छले बाण हानेर घाइते बनाएको मृगको चरित्र आदि विषय यस अध्यायमा चर्चित छन्।

अध्याय एकसय तीन – विरूपाक्षद्वारा टीकाभैरवको त्रिकूटचलमा रहेको प्रभातीर्थमा रामेश्वरको पूजन, रामेश्वरको महिमा बताउने सन्दर्भमा परशुरामको तीर्थयात्रावर्णन, परशुरामद्वारा भगवान् शिवको स्तुति, पृथिवीलाई क्षत्रियरहित बनाउन समर्थ हुन सकूँ भन्ने वरको प्रार्थना र भगवान् रुद्रबाट वरप्राप्ति, प्रभातीर्थको महिमा, प्रभादेवीको कथा, प्रद्युम्नको उपाख्यान आदि यस अध्यायका मुख्य विषय हुन्।

अध्याय एकसय चार – महाभारत–शृङ्खलाका तीन बहिनीका लेकअन्तर्गत सुन्दपर्वतको कालतीर्थमा रहेको कालेश्वरको वर्णन, वैतरणी नदीको वर्णन, वैतरणी नदीमा स्नान गरेको फल, लम्बकर्णको कथा, कालेश्वरको आराधना गर्ने लम्बकर्णद्वारा रुद्रलोकप्राप्ति, कालतीर्थमा स्नान गरेको महिमाजस्ता विषयहरू यस अध्यायमा समेटिएका छन्।

अध्याय एकसय पाँच – विरूपाक्षको ब्रह्मतीर्थयात्रा, त्रिकूटचलको ब्रह्मतीर्थ र मकवानपुरको पर्वतको चुचुरामा रहेका नटरम्भेश्वरको महिमा, विरूपाक्षद्वारा नटरम्भेश्वरको पूजा, ब्रह्मतीर्थको महिमा, ब्रह्मा आदिबाट गरिएका तीर्थदर्शनका प्रसङ्ग, ब्रह्मा आदि देवताद्वारा शिवजीको खोजी, लिङ्गको पूजा गर्न लागिरहेका ब्रह्माजी आदि देवताहरूका सामु भगवान् रुद्रको आविर्भाव, नृत्येश्वर अथवा नटरम्भेश्वर शिवको महिमावर्णनका प्रसङ्गमा देवशर्मा ब्राह्मणको कथा, उनको अधोगतिको वर्णन र कालान्तरमा ब्रह्मतीर्थमा स्नान गरेको फलस्वरूप उनको शिवलोकप्राप्ति आदि यस अध्यायमा चर्चित विषय हुन्।

अध्याय एकसय छ – विरूपाक्षद्वारा फर्पिङको व्याघ्राचलमा अवस्थित धर्मगङ्गा तीर्थ र शिवलिङ्गको दर्शनार्थ यात्रा, उद्दालकमुनिको जीवनकथा, उनीद्वारा उद्दालकेश्वरशिवलिङ्गको स्थापना एवं पूजन, उद्दालकेश्वरमा आई स्थूलोदरनामक दैत्यद्वारा गरिएको तपस्याको वर्णन, भगवान् शिवबाट वरप्राप्ति र उद्दालकेश्वरशिवलिङ्गको महिमावर्णन आदि यस अध्यायका मुख्य विषय हुन्।

अध्याय एकसय सात – नेमुनिका साथ विरूपाक्षको तीर्थयात्रा प्रसङ्गमा फर्पिङकै मर्कटचलमा रहेको गोपालतीर्थको यात्रा, गोपदी आदि नदीहरूको वर्णन, गोपालतीर्थको वर्णन, भगवान् विष्णुद्वारा गोपालतीर्थमा स्नान, कामधेनु र विष्णुको संवाद, कामधेनुको वचनलाई स्वीकार गरेर विष्णुद्वारा माटो खन्ने कार्य, त्यसभित्र महालिङ्गको उत्पत्ति, विष्णुद्वारा लिङ्गको स्तुति, लिङ्गको गोपालेश्वर भनी नामकरण, गोपालेश्वरको कृपाबाट विष्णुतीर्थको उत्पत्ति र विष्णुतीर्थको महिमा, राम शर्मा र कोशलदेशका राजाको संवाद र उनीहरूद्वारा आ–आफ्नो पूर्वजन्मको कथा वर्णन आदि यस अध्यायमा चर्चित विषय हुन्।

अध्याय एकसय आठ – चित्लाङको वज्रपर्वतमा अवस्थित ब्रह्मतीर्थको दर्शनार्थ विरूपाक्षको यात्रा, बाणासुरको कथा, शोणितपुरीको वर्णन, सुबाहुको चरित्र, सुबाहुद्वारा वृक्षको प्वालभित्र दिव्यलिङ्गको दर्शन, लिङ्गको स्पर्श हुनासाथ पुष्पक विमानमा सवार भई सुबाहुको स्वर्गयात्रा, ब्रह्मतीर्थको महिमा र कौत्सुकनामक ब्राह्मणको कथा जस्ता विषय यस अध्यायमा वर्णित छन्।

अध्याय एकसय नौ – विरूपाक्षद्वारा टिष्टुङको नन्दपर्वतमा रहेको नन्दितीर्थको यात्रा, उन्मत्तेश्वर शिवलिङ्गको दर्शन, उन्मत्तेश्वरको महिमा बताउने प्रसङ्गमा विष्णुभक्त ब्राह्मणको कथा, विद्याको अहङ्कारले पिशाच बन्न पुगेका विष्णुभक्तको यसै तीर्थमा स्नान गर्नाले पिशाचत्वनिवृत्ति, भगवान् शिवको नामजपका प्रभावले उनका अगाडि भगवान् शिवको आविर्भाव र ती ब्राह्मणको शिवसायुज्यप्राप्ति आदि विषयको वर्णन यस अध्यायमा गरिएको छ।

अध्याय एकसय दश – टिष्टुङकै नन्दपर्वतमा रहेको नन्दीतीर्थदर्शनार्थ विरूपाक्षको यात्रा, नन्दिकेश्वर भगवान्को महिमा, नन्दीलाई शिवजीद्वारा सराप, नन्दीद्वारा शिवको आराधना र नन्दिकेश्वर–शिवलिङ्गको आविर्भावजस्ता विषय यस अध्यायमा चर्चित छन्।

अध्याय एकसय एघार – कृछाल कार्कीछापको कशेरुपर्वतमा रहेको गोतीर्थका लागि विरूपाक्षको यात्रा, गोखुरेश्वरशिवलिङ्गको महिमा, गाईले दूधको धारा लगाएर निरन्तर अभिषेक गर्ने ठाउँ देखेर आदिवासीहरूद्वारा त्यस ठाउँको उत्खनन, खन्दाखन्दै शिवलिङ्गको आविर्भाव, आदिवासीहरूद्वारा त्यस लिङ्गको पूजा, पूजाको प्रभावले आदिवासीहरूको शिवपुरयात्रा इत्यादि विषय यस अध्यायमा समेटिएका छन्।

अध्याय एकसय बाह्र – पालुङको ऋक्षवान्पर्वत अन्तर्गत भद्रतीर्थको दर्शनार्थ विरूपाक्षको यात्रा, पाण्डुकेश्वर भगवान्को पूजा, भद्रतीर्थ र पाण्डुकेश्वर शिवको महिमा बताउने प्रसङ्गमा पाण्डुकब्राह्मणको कथा, पाण्डुकब्राह्मणद्वारा भद्रतीर्थमा स्नान र शिवजीको आराधना, पाण्डुकद्वारा आराधना गरिएका कारण शिवलिङ्गको पाण्डुकेश्वर नामकरण, पाण्डुकको मुक्ति, देवासुरयुद्धवर्णन र देवताहरूको पराजय जस्ता विषय यस अध्यायमा वर्णित छन्।

अध्याय एकसय तेह्र – विरूपाक्षद्वारा गालवतीर्थको यात्रा, कूटेश्वरभगवान्को पूजा, गालवको परिचय, गण्डकी र श्वेतवती नदीको सङ्गमतीर्थको महिमा, गण्डकद्वारा शिवजीको आराधना, कूटेश्वरशिवलिङ्गको उत्पत्तिप्रसङ्ग, विराट् देशका राजा सुदर्शनको कथा, धादिङको आग्रामा स्थित चित्रकूटपर्वतमा रहेको गालवतीर्थको महिमा र कूटेश्वरको दर्शनको पुण्यफलवर्णन यस अध्यायका मुख्य विषय हुन्।

अध्याय एकसय चौध – असितेश्वर भगवान्को दर्शनका लागि विरूपाक्षको तीर्थयात्रा, धादिङको महेशखोला भीरपानीभन्दा तल महादेवबेसीमा रहेको असिततीर्थको महिमा, असितऋषिद्वारा शिवजीको आराधना, भगवान्को आविर्भाव, कुक्कुटास्यनामक शूद्रको कथा, शूद्रको असिततीर्थयात्रा, शिवजीको आराधना र शिवबाट वरप्राप्ति यस अध्यायका प्रमुख कथाप्रसङ्ग हुन्।

अध्याय एकसय पन्ध्र – देवीघाटअन्तर्गत नीलकूटपर्वतको भैरवतीर्थमा रहेका भैरवेश्वरको दर्शनका लागि विरूपाक्षको यात्रा, भैरवेश्वरको वर्णन, एकाक्षवैश्यको कथा, वैश्यको पूर्वजन्मका पापहरूको वर्णन, पापनिवारणका लागि नेपालका तीर्थहरूको दर्शन, भैरवेश्वर र भैरवतीर्थको महिमा आदि विषयको उल्लेख यस अध्यायमा गरिएको छ।

अध्याय एकसय सोह्र – कविलासअन्तर्गत शृङ्गाचलमा रहेको ब्रह्मतीर्थ र त्यहाँ प्रकट हुनुभएका ब्रह्मेश्वरशिवको वर्णन, बाणासुरको कथा, बाणासुरद्वारा ब्रह्मेश्वरको आराधना, अनिरुद्धको कथा, बाणासुरद्वारा अनिरुद्धलाई बन्धनमा पारिएको कथा, यादवहरूको बाणासुरका साथमा युद्ध, बाणासुरको पराजय, अनिरुद्धको उषाका साथमा विवाह आदि प्रसङ्ग यस अध्यायमा समेटिएका छन्।

अध्याय एकसय सत्र – कविलास डाँडाबारीअन्तर्गत चन्द्रकान्तिपर्वतमा रहेको स्कन्दतीर्थ र स्कन्देश्वरको दर्शनका लागि विरूपाक्षको यात्रा, स्कन्देश्वरको महिमा, स्कन्दतीर्थको उत्पत्तिकथा, स्कन्दद्वारा शिवलिङ्गको आराधना, स्कन्दतीर्थको महिमा आदि प्रसङ्गका साथ आदिवासीको कथा पनि यस अध्यायमा वर्णित छ।

अध्याय एकसय अठार – शिवपुरी मृगेन्द्रपर्वतमा रहेको नृसिंहतीर्थको वर्णन र शतरुद्रेश्वर शिवको महिमा, विश्वगङ्गाको वर्णन, नृसिंहतीर्थमा स्नानदानको फलवर्णन, सूर्यकेतुद्वारा परशुरामको स्तुति र परशुरामद्वारा सूर्यकेतुलाई राज्यप्रदान गरिएको प्रसङ्ग आदि यस अध्यायका मुख्य विषय रहेका छन्।

अध्याय एकसय उन्नाईस – विरूपाक्षद्वारा आकाशगङ्गातीर्थ र काकेश्वर भगवान्को दर्शन, काकेश्वरको समीपमा सर्कङ्कटपर्वतमा रहेको आकाशगङ्गातीर्थको वर्णन, भगवान् शिव कैलासबाट अन्तर्धान हुनुभएपछि ब्रह्मा आदि देवताहरूद्वारा शिवजीको खोजी, विष्णुद्वारा आकाशवाणीजस्तै काकवाणीको श्रवणपछि देवताहरूद्वारा यो भगवान् शिवकै वाणी हो भन्ने विश्वास गरी शिवको स्तुति, काकेश्वरशिवलिङ्गको पूजा, आकाशगङ्गातीर्थको महमिावर्णन आदि विषय यस अध्यायमा समेटिएका छन्।

अध्याय एकसय बीस – मणिचूडपर्वतको थुम्कामा रहेको मणितीर्थमा भगवान् शिवको मणिचूडेश्वर लिङ्गका रूपमा आविर्भाव, देवताहरूद्वारा भगवती र भगवान् शिवको पूजा, त्यहाँ रहेकी वज्रयोगिनी भगवतीको वर्णन, मणिचूडेश्वरशिवलिङ्गको महिमा आदि विषयको निरूपण यस अध्यायमा गरिएको छ।

अध्याय एकसय एक्काईस – विरूपाक्षको योगगङ्गा र योगेश्वरी भगवतीको दर्शनका लागि साँखुको मणिचूडपर्वतमा रहेको गङ्गातीर्थमा यात्रा, विरूपाक्षद्वारा योगेश्वरी भगवतीको स्तुति, विरूपाक्षलाई देवीद्वारा वरदान, यसै प्रसङ्गमा देवीदासको कथा र उनको शिवाराधनाका कारण शिवलोकप्राप्ति जस्ता विषयको चर्चा यस अध्यायमा गरिएको छ।

अध्याय एकसय बाईस– नारायणसरोवरको महिमा, नारायणद्वारा शिवपूजन, नारायणीनदीको वर्णन, नारायणेश्वरशिवलिङ्गको महिमा, "तप्स्या गानु बोध्यानी फेँदी गाउँ" नजिकै गन्धमादनपर्वतमा रहेको कर्णसरोवरतीर्थ र त्यहाँ प्रकट हुनुभएका नारायणेश्वर शिवको महिमा आदि विषयको वर्णन आदि यस अध्यायका मुख्य विषय रहेका छन् ।

अध्याय एकसय त्याईस – ज्योतिर्लिङ्गको महिमा वर्णन गर्ने प्रसङ्गमा सनक ऋषिको कथा, योगतीर्थको महिमा, साँखु कामधेनुपर्वतमा प्रकट हुनुभएका ज्योतिर्लिङ्गेश्वर शिवको वर्णन र सनकलाई शिवबाट तत्त्वज्ञानको प्राप्तिबारे यसमा चर्चा गरेका छन्।

अध्याय एकसय चौबीस – विरूपाक्षको रत्नसरोवरतीर्थ र "दोलागिरि महादेवपोखरी" मा अवस्थित रत्नचूडेश्वरशिवलिङ्गको दर्शनार्थ यात्रा, एउटा शिवभक्त ब्राह्मणको कथा, ब्राह्मणद्वारा रत्नचूडेश्वरको उपासना र शिवलोकप्राप्ति आदि विषयको वर्णन यस अध्यायमा गरिएको छ।

अध्याय एकसय पच्चीस – चाङ्गीश्वरीअन्तर्गत दोलागिरिको वीरगङ्गातीर्थमा प्रकट भएको वागीश्वरशिवलिङ्गको महिमा, वाङ्नामक महर्षिको कथा, वीरानदी र वागीश्वरको महिमा, वागीश्वरको पूजा आदिको फलनिरूपण आदि यस अध्यायका मुख्य विषय रहेका छन्।

अध्याय एकसय छब्बीस – शङ्खसरोवरतीर्थको महिमा, कीलेश्वरशिवलिङ्गको महिमा, मुरदैत्यको आख्यान, मुरदैत्यद्वारा शिवलिङ्गको उपासना र त्रिलोकीविजय, देवदानवको युद्ध, महादेवीद्वारा मुरदैत्यलाई भस्मसात् गरेको कथा समेत यस अध्यायमा प्रतिपादित छन्।

अध्याय एकसय सत्ताईस – कीलेश्वर भगवान्‌को माहात्म्य, विष्णुभक्त ब्राह्मणको कथा, कीलेश्वरको आराधनाबाट सायुज्यप्राप्ति, सुग्रीव ब्राह्मणको कथाअन्तर्गत उनीद्वारा कीलेश्वरको आराधना गरेको प्रसङ्ग, म्लेच्छको आचरणमा रहने ब्राह्मणको कथा, गरुडको कथा, शङ्खपालको तपस्या र शङ्खसरोवरको महिमावर्णन आदि यस अध्यायका मुख्य विषय रहेका छन्।

अध्याय एकसय अट्ठाईस – वाल्मीकीश्वर भगवान् शिव र वीरभद्रतीर्थको वर्णन, वाल्मीकिद्वारा वीरभद्रतीर्थमा स्नान, वाल्मीकीश्वरको महिमावर्णन आदि विषयको चर्चा यस अध्यायमा गरिएको छ।

अध्याय एकसय उनन्तीस – मङ्गलेश्वरशिवलिङ्गको महिमा वर्णन गर्ने प्रसङ्गमा मङ्गलमुनिको कथा, मङ्गलमुनिद्वारा शिवजीको आराधना र कठोर तपस्या गरिएको सम्बन्धमा विस्तृत निरूपण, ऊर्ध्वकेशको कथा एवं भद्रतीर्थको महिमाबारे चर्चा यस अध्यायका मुख्य विषय हुन्।

अध्याय एकसय तीस – विमलोदकगङ्गाको वर्णन, विमल ब्राह्मणको कथा, विमलद्वारा गरिएको लिङ्गपूजाको वर्णन एवं विमलेश्वरशिवलिङ्गको महिमाजस्ता विषय यस अध्यायमा समेटिएका छन्।

अध्याय एकसय एकतीस – अनन्तेश्वरशिवलिङ्गको महिमा वर्णन गर्ने प्रसङ्गमा ऋषितीर्थको वर्णन, अगस्त्य आदि महर्षिहरूको नामोल्लेखनसहित ऋषिस्वभावको वर्णन, ऋषिहरूद्वारा भगवान् पशुपतिको प्रशंसा र अनन्तलिङ्गेश्वर भगवान्‌को पूजा एवं अनन्तलिङ्गको महिमाजस्ता विषयबारे यस अध्यायमा प्रकाश पारिएको छ।

अध्याय एकसय बत्तीस – विश्वरूपेश्वरशिवलिङ्ग र वृद्धगङ्गाको महिमा वर्णन गर्ने प्रसङ्गमा श्रुतिगीतनामक ब्राह्मणको कथा, वृद्ध ब्राह्मणद्वारा वृद्धगङ्गातटप्रति लक्षित तीर्थयात्रा र विश्वरूपेश्वरलिङ्गको पूजा, लिङ्गेश्वर भगवान्‌को आविर्भाव, विश्वरूपशिवको वर्णन, रुद्रको कृपाबाट ब्राह्मणको मुक्ति र दीर्घतपाको कथा यस अध्यायका मुख्य प्रतिपाद्य विषय हुन्।

अध्याय एकसय तेत्तीस – सोमलिङ्गको महिमा वर्णन गर्ने प्रसङ्गमा चन्द्रमामाथि दक्षप्रजापतिको सराप, चन्द्रमालाई कुष्ठरोग, चन्द्रमाको रोगनिवारण गर्न देवताहरूको प्रयास, ब्रह्माजीको आदेशअनुसार चन्द्रमाद्वारा शिवलिङ्गको पूजा र सोमेश्वरशिवलिङ्गको आविर्भाव, भगवान् सोमेश्वरद्वारा चन्द्रमालाई वरदान, कुष्ठरोगबाट मुक्ति, वृहस्पतिकी पत्नी ताराको कथा, ताराबाट बुधको उत्पत्ति आदि विषय यस अध्यायमा वर्णित छन्।

अध्याय एकसय चौंतीस – गोभराटेश्वरशिवलिङ्गको महिमा वर्णन गर्ने प्रसङ्गमा भगवान् पशुपतिको सेवा गरिरहेकी कामधेनुको वर्णन, गोशृङ्गी र चक्रावती नदीको वर्णन, गोशृङ्गतीर्थको परिचय, गोदावरीतीर्थको महिमा, जलमूर्ति गोदावरीको सबै तीर्थहरूभन्दा उत्तम महिमा रहेको र स्वयं गोदावरी सर्वतीर्थमयी भएको तथ्य प्रतिपादन र रूपतीर्थको महिमावर्णन यस अध्यायका मुख्य विषय रहेका छन्।

अध्याय एकसय पैंतीस – भृङ्गीद्वारा भगवान् शिवको आराधना, भृङ्गीश्वरशिवलिङ्गको आविर्भाव, भृङ्गीश्वर शिवद्वारा भृङ्गीलाई वरदान, शिवजीद्वारा पार्वतीप्रति भृङ्गीश्वरको महिमा कथन, शिवजीको कृपाबाट भृङ्गीको शिवलोकयात्रा, नहुषराजाको कथा, नहुषद्वारा भगवान् शिवको आराधना आदि यस अध्यायका मुख्य प्रतिपाद्य विषय हुन्।

अध्याय एकसय छत्तीस – त्रितयनामक महर्षिको कथा, तपोभूमिको प्रकृतिसौन्दर्य, त्रितयको तपस्यासिद्धि, तालजङ्घनामक ब्राह्मणको कथा, तालजङ्घद्वारा शिवलिङ्गको स्पर्श, शिवलोकप्राप्ति र त्रिलिङ्गेश्वरशिवलिङ्गको महिमावर्णन यस अध्यायमा चर्चित विषय हुन्।

अध्याय एकसय सैंतीस – कुपितेश्वरशिवलिङ्गको महिमा वर्णन गर्ने प्रसङ्गमा द्वितयनामक मुनिको तपस्या, द्वितयनामक मुनिको शिवाराधनाद्वारा मुक्ति, किरातको उपाख्यान, कुपितेश्वरको आविर्भाव, ब्रह्मा आदिद्वारा कुपितेश्वर शिवको स्तुति र कुपितेश्वर शिवलिङ्गको महिमावर्णन यस अध्यायका मुख्य प्रतिपाद्य विषय हुन्।

अध्याय एकसय अठ्तीस – गौरीकुण्डतीर्थको वर्णन, किरातेश्वरकी छोरी विरूपाको परिचय, गौरीकुण्डको जलस्पर्श गर्नाले विरूपालाई दिव्यरूपप्राप्ति, गङ्गादासको कथा, गङ्गादास दुराचारी भए पनि भगवान् शिवको आराधना गरेका कारण त्यसलाई मुक्तिप्राप्ति तथा काल एवं कालदूतको संवाद जस्ता विषय यस अध्यायमा समेटिएका छन्।

अध्याय एकसय उनन्चालीस – रुद्रतीर्थ र गोलेकेश्वरको महिमा बताउने प्रसङ्गमा केकरनामक राक्षसको कथा, राक्षसद्वारा रुद्रतीर्थको जलपान, त्यसैबाट त्यसको मुक्ति, वृत्रासुरको तपस्या र वरदानप्राप्ति, इन्द्र र वृत्रासुरको युद्ध, इन्द्रद्वारा वृत्रासुरको संहार, इन्द्रलाई ब्रह्महत्याको दोष, त्यसको निवारणका लागि इन्द्रद्वारा रुद्रतीर्थमा स्नान र गोलोकेश्वरशिवलिङ्गको पूजा आदि विषय यस अध्यायमा प्रतिपादित छन्।

अध्याय एकसय चालीस – मीनतीर्थको महिमा वर्णन गर्ने प्रसङ्गमा भगवान् नारायणले मत्स्यावतार लिनुभएको कथा, पाशुपतक्षेत्रको महिमा, द्वादशी आदि पुण्यतिथिको वर्णन, मातातीर्थको महिमा, सुमेधानामक वैश्यको कथा र मुचुकुन्दको विष्णुलोकप्राप्ति जस्ता विषय यस अध्यायमा वर्णित छन्।

अध्याय एकसय एकचालीस – चन्दनभराटेश्वरको आविर्भावको वर्णन गर्ने क्रममा ब्रह्मानन्दनामक ब्राह्मणको कथा, आफ्ना किशोर पुत्रको मृत्यु भएका कारण शोकमा परेका ब्रह्मानन्दको विलाप, ब्रह्मानन्दले यजमानहरूको दान ग्रहण गरेका कारण छोराको मृत्यु भएको चर्चा, ज्योतिर्लिङ्गका रूपमा प्रकट हुनुभएका भगवान् शिवको आज्ञाले ब्राह्मणद्वारा शिवको पूजा, ब्राह्मणद्वारा स्नान, दान र पूजा गरिएका कारण मृत बालकद्वारा पुनर्जीवन प्राप्ति आदि कथाको निरूपण यस अध्यायमा गरिएको छ।

अध्याय एकसय बयालीस – यक्षेश्वरको महिमा बताउने प्रसङ्गमा हयग्रीवनामक यक्षको कथा, सम्पत्ति, यौवन र पदले गर्दा मातेको हयग्रीवलाई कुबेरको उपदेश, कुबेरको आज्ञापालन नगरेका कारण कुबेरद्वारा राज्यबाट निकालिएको हयग्रीवद्वारा तीर्थाटन, भगवान् शिवको आराधना र शिवलोकप्राप्ति, यसै प्रसङ्गमा भगवान् विष्णुको दर्शन गरेको फलप्राप्ति समेतको वर्णन यस अध्यायमा गरिएको छ।

अध्याय एकसय त्रिचालीस – पिण्डारकतीर्थको वर्णन गर्ने प्रसङ्गमा भगवती चण्डिकाको वर्णन, चण्डिकाद्वारा शिवलिङ्गको पूजा, चण्डिकेश्वर भगवान् शिवद्वारा चण्डिकालाई वरप्रदान, अन्धक दैत्यको कथा, अन्धक दैत्यको पराक्रम, देवता र दानवको युद्ध र पाशुपत अस्त्रको महिमाको चर्चा यस अध्यायमा गरिएका छन्।

अध्याय एकसय चौवालीस – धर्मेश्वर शिवलिङ्ग र धर्मगङ्गाको वर्णन, धर्मगङ्गामा गरिएका स्नान, दान आदि सत्कर्मको फलवर्णन, धर्मेश्वरलिङ्गको महिमा, किरातको कथा, किरातद्वारा धर्मेश्वरशिवलिङ्गको पूजा, पूजाको प्रभावले त्यसको मुक्ति, जलमा शयन गर्नुहुने भगवान् विष्णुको महिमा आदि विषयको निरूपण यस अध्यायमा गरिएको छ।

अध्याय एकसय पैंतालीस – गोकर्णेश्वरशिवलिङ्गको वर्णन, पितामहतीर्थको वर्णन, पुलह ऋषिको कथा, पुलह ऋषिसँग दन्तुरनामक वैश्यको भेट, दन्तुरद्वारा पुलहका सामु आफ्नो वृत्तान्त निवेदन, पुलहमुनिको आदेशबाट दन्तुरद्वारा पितृहरूका निमित्त पिण्डदान आदि कार्यसम्पादन, पिण्डदानको फल निरूपण, दन्तुरप्रति उसका पितृहरूको वचन अनि त्यसको शिवसायुज्यप्राप्ति आदि विषयको वर्णन यस अध्यायमा गरिएको छ।

अध्याय एकसय छयालीस – विरूपाक्षद्वारा नेमुनिका साथ हनुतीर्थको यात्रा, सूर्यलाई खेलौना बनाउन हनुमान्जीको प्रयास र हनुमान्जीको आकाशगमन, हनुमान्जीमाथि महर्षिहरूको आशीर्वाद, महर्षिहरूद्वारा हनुतीर्थको नामकरण, हनुतीर्थको महिमा, हनुमान्जीद्वारा भगवान् शिवको लिङ्गस्थापना इत्यादि विषयमा यस अध्यायमा चर्चा गरिएको छ।

अध्याय एकसय सैंतालीस – शङ्खमूलतीर्थको महिमा, रुद्रधारा, मणिमती र वाग्वती नदीहरूको माहात्म्य, पृथिवीमा नेपालक्षेत्रको सर्वोत्तम स्थिति वर्णन, व्यासजीको तपस्याका साथै सप्तर्षिहरूको तपस्या र सिद्धिको वर्णन, आफ्ना पिताको वध गर्नाले ब्रह्मपिशाचको जुनिमा प्राप्त भएका ब्राह्मणको पुलह आदि महर्षिहरूका साथ भेट, पुलह आदि महर्षिहरूका आदेशले पिताको वध गर्ने ब्रह्मपिशाच ब्राह्मणको तीर्थस्नान आदि कर्मद्वारा पिशाचयोनिबाट मुक्ति आदि विषयको निरूपण यस अध्यायमा गरिएको छ।

अध्याय एसकसय अठ्चालीस – बाणेश्वरशिवलिङ्गको वर्णन, बाणगङ्गाको परिचय, पिङ्गकेश किरातको कथा, बाणेश्वरशिवलिङ्गलाई बाणेश्वर भनिएको कारणबारेको चर्चा यस अध्यायका मुख्य विषय हुन्।

अध्याय एकसय उनन्पचास – ज्ञानेश्वरशिवलिङ्गको वर्णन र मयूरतीर्थको वर्णनको प्रसङ्गमा दैत्यहरूबाट हारेका देवताहरूले स्थापना गरेको महालिङ्गको वर्णन, ज्ञानेश्वर र बाणेश्वरको महिमावर्णन यस अध्यायका मुख्य विषय हुन्।

अध्याय एकसय पचास – पर्वतेश्वरको महिमा वर्णन गर्ने प्रसङ्गमा स्थूलपादनामक यक्षको कथा, यक्षद्वारा तीर्थस्नान, तीर्थस्नानपछि ज्ञानप्राप्ति, पर्वतेश्वरको महिमा र स्थूलपाद यक्षको शिवलोकगमन आदि विषय यस अध्यायमा समेटिएका छन्।

अध्याय एकसय एकाउन्न – जलेश्वरको महिमा, जलदेवीद्वारा जलेश्वरको स्तुति, जलेश्वरद्वारा वरदान, वाग्वतीको धर्मतरङ्गिणी र शिवगङ्गा भनी नामकरण, त्रिशङ्कुनामक दैत्यको कथा र त्रिशङ्कुको शिवलोकप्राप्ति इत्यादि विषय यस अध्यायमा वर्णित छन्।

अध्याय एकसय बाउन्न – गुह्येश्वरी भगवतीको महिमा, गुह्येश्वरीसहस्रनाम, गुह्येश्वरीको गङ्गा आदि नदी र सम्पूर्ण देवीहरूभन्दा ठूलो महिमा रहेको तथ्यप्रकाशनका साथै गुह्येश्वर महादेव र गुह्येश्वरी महादेवी शिवशक्तिकै रूपमा रहेको वर्णन यस अध्यायका मुख्य प्रतिपाद्य विषय हुन्।

अध्याय एकसय त्रिपन्न – गुह्येश्वरतीर्थ र गुह्येश्वरीतीर्थको वर्णन, महादेवको महिमा बताउने प्रसङ्गमा पिङ्गलाको कथा, पिङ्गलाद्वारा गुह्येश्वर शिवको आराधना, पिङ्गलाको शिवलोकप्राप्तिको वर्णनका साथ महालिङ्गपूजा गर्नाले व्यङ्गुनामक दलितको मुक्तिबारे यस अध्यायमा चर्चा गरिएको छ।

अध्याय एकसय चौवन्न –मृगस्थली आदि तीर्थको वर्णन गर्ने प्रसङ्गमा ब्रह्मोदय आदि तीर्थको महिमा, गौरीतीर्थ, गोरक्षनाथ र मत्स्येन्द्रनाथको वर्णनका साथ सिद्धाश्रम मृगस्थलीको महिमा समेत यस अध्यायमा बताइएको छ।

अध्याय एकसय पचपन्न –किरातेश्वर शिवको वर्णन गर्ने प्रसङ्गमा योगमायाको वर्णन, शिवले किरातरूप धारण गर्नुभएको कथा, किरातरूपमा रहनुभएका शिवको श्लेष्मान्तकवनमा भ्रमण, किरातरूपिणी भगवती पार्वतीको श्लेष्मान्तकवनमा आगमन, दुबैको वनविहारको वर्णनका साथै किरातेश्वर शिवलिङ्गको महिमामाथि यस अध्यायमा प्रकाश पारिएको छ।

अध्याय एकसय छपन्न – तीर्थयात्री बनेका अर्जुनको सिद्धपर्वत मृगस्थलीमा आगमन, मृगस्थलीमा रहेका किरातहरूका साथमा अर्जुनको संवाद, अर्जुन र किरातहरूको युद्ध, किरातेश्वर शिव र अर्जुनको युद्ध, अर्जुनद्वारा पराक्रमप्रदर्शन, किरातेश्वर शिव र अर्जुनको संवाद, अर्जुनद्वारा शिवस्तुति, शिवद्वारा अर्जुनलाई वरप्रदान र पुनः अर्जुनद्वारा किरातेश्वर शिवको पूजाको वर्णन यस अध्यायका मुख्य विषय हुन्।

अध्याय एकसय सन्ताउन्न – भस्मेश्वरशिवलिङ्गको महिमा, भस्मगङ्गास्नानको फल र चन्द्रागिरिपर्वतको महिमाको निरूपण यस अध्यायमा गरिएको छ।

अध्याय एकसय अन्ठाउन्न – नेमुनिद्वारा विरूपाक्षप्रति भुवनेश्वरशिवलिङ्गको आविर्भावकथाको वर्णन, ज्ञानकुण्डतीर्थको महिमा र भुवनेश्वर शिवलिङ्गको महिमा इत्यादि प्रसङ्ग यस अध्यायमा आएका छन्।

अध्याय एकसय उनन्साठी – रुद्रागारेश्वरशिवलिङ्गको महिमा वर्णन गर्ने प्रसङ्गमा शङ्कुनामक आदिवासीको उपाख्यान, आदिवासीद्वारा शिवलिङ्गको पूजा, त्यसपछि रुद्रगणका साथ आदिवासीको शिवपुरयात्रा, रुद्रागारेश्वरशिवलिङ्गको महिमा इत्यादि विषयमाथि यस अध्यायमा प्रकाश पारिएको छ।

अध्याय एकसय साठी – पशुपति मन्दिरवरिपरिको विशाल पाशुपतक्षेत्र शिवलिङ्गमय भएको र त्यसका भित्र–बाहिर चारैतिर भगवान् शिवका लिङ्ग रहेको तथ्यको प्रतिपादन र ब्रह्मेश्वरशिवलिङ्ग, शक्रेश्वरशिवलिङ्ग, ज्योतिर्लिङ्गेश्वरशिवलिङ्ग आदि महालिङ्गहरूको वर्णन गर्दै वासुकिनागको तपस्या र सिद्धि, भगवान् पशुपतिद्वारा वासुकिनागलाई वरप्रदान आदि विषयको चर्चा यस अध्यायमा गरिएको छ।

अध्याय एकसय एकसट्ठी – पशुपतिनाथको महिमा बताउने प्रसङ्गमा पार्वतीद्वारा सिद्धेश्वर पशुपतिको प्रशंसा, भगवान् पशुपति सबै देवताका रूप हुनुहुन्छ भन्ने तथ्यको प्रतिपादन, पशुपतिको ज्योतिर्लिङ्गस्वरूपको वर्णन, पशुपतिको स्वरूप वर्णन गर्ने क्रममा सद्योजात, अघोर, तत्पुरुष, वामदेव र ईशाननामक पशुपतिका पाँच मुखको वर्णन, पशुपतिशिवलिङ्गको स्थावरलिङ्गमा परिणतिको कथावर्णन र अन्तमा गृहस्थआश्रमको प्रशंसा यस अध्यायका मुख्य विषय हुन्।

### २.२.६. पाशुपतक्षेत्र वर्णन एवं श्रीकृष्ण–नेपालयात्रा–प्रकरण

अध्याय एकसय बैसट्ठी – सेतुभिन्न, दामोदर, प्रमोद, हरिद्वार, पञ्चनद, मृत्युञ्जय, प्रयाग, त्रिविक्रम आदि तीर्थहरूको विस्तृत वर्णन गर्दै तीर्थमहिमाका बारेमा यस अध्यायमा प्रकाश पारिएको छ।

अध्याय एकसय त्रिसट्ठी – मृगोदक, बर्बरिका, नारायण, अगस्त्य, नीलकण्ठ, वासुकि, भृगुपत्तन, गोखुर, मनकाम, अनन्त, देवभट्ट आदि अनेक तीर्थहरूको विस्तृत वर्णन यस अध्यायमा समेटिएको छ।

अध्याय एकसय चौंसट्ठी – वाग्वतीको महिमा बताउने प्रसङ्गमा वितण्डको उपाख्यान, चित्रगुप्तद्वारा परलोकमा गएका वितण्डका कुकृत्यहरूको वर्णन, वाग्वतीको जलको महिमा, धर्मदत्तको राज्यप्राप्ति इत्यादि विषयको प्रतिपादन यस अध्यायमा गरिएको छ।

अध्याय एकसय पैंसट्ठी – केरलका राजाको कथा, पाशुपतक्षेत्रको महिमा, वैशालीका अधिपति लिच्छविराजाको देवताहरूका साथमा युद्ध, लिच्छविराजाको सत्यवतीनगरमा प्रवेश, भगवान्‌को दर्शन र सत्यवती नगरको महिमाजस्ता विषय यस अध्यायमा समेटिएका छन्।

अध्याय एकसय छैसट्ठी – धर्मदत्त राजाको शिवलोकप्राप्तिको कथा, सरस्वतीपुरका स्वामीद्वारा भृङ्गी ऋषिको स्वागत गरेको वृत्तान्त, धर्मेशको देवताहरूका साथमा युद्ध, धर्मेशद्वारा शिवको स्तुति, प्रजासहित राजाको शिवधाम गमन र काशी विश्वनाथ लिङ्गको महिमाबारे यस अध्यायमा प्रकाश पारिएको छ।

अध्याय एकसय सतसट्ठी – भगवान् शिवद्वारा पाशुपती पुरीको महिमावर्णन, मृगका रूपमा परिणत भएका राजकुमारहरूको कथा, पद्मिनी र चारुलोमाको कथा, मृगका रूपमा रहनुभएका आदिमृग भगवान् शिवद्वारा तीर्थ र लिङ्गको दर्शन स्पर्शनको महत्त्व प्रतिपादन इत्यादि विषय यस अध्यायमा चर्चित छन्।

अध्याय एकसय अठसट्ठी – वज्रनाभ (इन्द्रदमन) दैत्यको वर्णन गर्ने प्रसङ्गमा प्रभावतीको चरित्रवर्णन, वज्रनाभद्वारा ब्रह्माजीको आराधना, सिद्धिप्राप्ति, ब्रह्माजीद्वारा त्यसलाई देवता र दानव कसैबाट पनि मर्नेछैनौ भन्ने वरदान आदि विषयमा यस अध्यायमा चर्चा गरिएको छ।

अध्याय एकसय उनन्सत्तरी – वज्रनाभद्वारा स्वर्गमा आक्रमण, देवता र दानवको युद्ध, वज्रनाभको स्वर्गविजय, ब्रह्माजीको आज्ञाले वज्रनाभको पृथिवीमा आगमन र प्रद्युम्नको परिचय आदि विषय यस अध्यायमा वर्णित छन्।

अध्याय एकसय सत्तरी – इन्द्रदमनद्वारा वाग्वतीको जल थुन्नका लागि चारैतिर ठूलो पर्खाल एवं पुल बनाउने कार्य, बनाएको पर्खालको रक्षाका लागि शङ्खासुरको नियुक्ति र सरासर बगिरहेकी वाग्वती रोकिएर काठमाडौँ उपत्यका तलाउका रूपमा परिणत भएको कथा यस अध्यायका मुख्य विषय हुन्।

अध्याय– एकसय एकहत्तर – इन्द्रदमनकी सुन्दरी बहिनी प्रभावतीले आफूसुहाउँदो पति प्राप्त गर्न नारदजीको उपदेशअनुसार वाग्वतीप्रभव पर्वतमा गई महामाया भगवती पार्वतीको आराधना गरेको प्रसङ्ग र उनको आराधनाबाट प्रसन्न हुनुभएकी पार्वतीले प्रद्युम्नसँग विवाह हुनेछ भनी वरदान दिनुभएको विषयको प्रतिपादन यस अध्यायमा गरिएको छ।

अध्याय एकसय बहत्तर – सरोवरका रूपमा परिणत भएकी वाग्वतीनदीको शोभा, प्रभावतीद्वारा वाग्वतीमा विहार र पार्वतीको पूजा, पार्वतीद्वारा श्रीकृष्णका छोरा प्रद्युम्नलाई तिमीले प्रभावती र चन्द्रावतीलाई समेत पत्नी बनाएर द्वारकामा लैजानेछौ भन्ने वरप्रदान, रात्रिमा सपनामा भोग गरिएकी दैत्यकी छोरी सुन्दरी प्रभावतीको दर्शन गर्न तीर्थयात्राको निहुँ बनाएर नेपाल जान आफ्ना पिता कृष्णसँग प्रद्युम्नको अनुरोध, प्रद्युम्नका साथ श्रीकृष्णको नेपालयात्रा, श्रीकृष्ण र प्रद्युम्नको हिमालयका गुफाहरूमा विहार इत्यादि विषयमा यस अध्यायमा प्रकाश पारिएको छ।

अध्याय एकसय त्रिहत्तर – श्रीकृष्ण आदि यादवहरूको वाग्वती उत्पन्न हुने पर्वतको शिखरमा यात्रा, त्यहीँ नारदजीको आगमन, नारदजीद्वारा चन्द्रावतीको सौन्दर्यवर्णन, त्यसै अवसरमा भगवान् कृष्णद्वारा बाणासुरको संहार, चक्रद्वारा पर्खाल र पुलको भेदन गरेपछि मात्र वाग्वती काठमाडौँ उपत्यका छाडेर बाहिर जानेछन् भन्ने नारदजीको भनाइ, श्रीकृष्ण आदि यादवहरूको चाङ्गुनारायण पर्वतमा यात्रा आदि विषयको वर्णन यस अध्यायमा गरिएको छ।

अध्याय एकसय चौहत्तर – प्रभावतीद्वारा सपनामा श्रीकृष्णका छोरा प्रद्युम्नको दर्शन, आफ्नी सँगिनी हंसीका साथमा सपनाको विषयमा प्रभावतीको कुराकानी, हंसीद्वारा सपनाको फल प्रकाशन, नटको रूप लिएर यादवहरूका साथमा प्रद्युम्नको त्यहाँ आगमन र दैत्यहरूलाई मोहनी लगाउने कार्यबारे प्रकाश पारिएको छ।

अध्याय एकसय पचहत्तर – नटको रूप धारण गर्ने सुन्दर स्वरूप भएका प्रद्युम्नलाई देखेर साह्रै कामपीडित भएकी प्रभावतीको आफ्नी सखीसँग कामवेदनाको प्रकाशन, नारदजी र सखीको प्रयासबाट प्रद्युम्न र प्रभावतीको सङ्गम, उनीहरूद्वारा गोप्यरूपमा गान्धर्वविवाह, भमराको रूप लिएर दुबैको द्वारकागमनको चर्चा यस अध्यायका मुख्य विषय हुन्।

अध्याय एकसय छयहत्तर – इन्द्रदमनको दरबारमा नारदको आगमन, नारदबाट प्रद्युम्नद्वारा प्रभावतीको हरण भई उनी द्वारकामा पुगेको समाचार सुनेर इन्द्रदमनको चिन्ता, नारदजीद्वारा इन्द्रदमनलाई द्वारका गई कौस्तुभमणि हरण र प्रभावतीको प्रत्यावर्तन गर्न उपाय दिग्दर्शनजस्ता विषय यस अध्यायमा समेटिएका छन्।

अध्याय एकसय सतहत्तर – प्रभावतीको हरण भएको कुरा थाहा पाएर इन्द्रदमनको द्वारकामाथि आक्रमण गर्ने योजना, दानासुरनामक राक्षसद्वारा इन्द्रदमनलाई रात्रिमा द्वारकामा पुऱ्याउने कार्य, सम्पूर्ण द्वारकाका यादवहरूलाई मोहनी लगाएर इन्द्रदमनद्वारा कौस्तुभमणि र आफ्नी बहिनी प्रभावतीको हरण, नारदजीबाट इन्द्रदमनले कौस्तुभमणि हरण गरेको छ र आफ्नी बहिनी प्रभावतीलाई पनि द्वारकाबाट फिर्ता गरी ल्याएको छ भन्ने खबर सुनेर भगवान् कृष्ण क्रोधित हुनुभएको विषयमा यस अध्यायमा प्रकाश पारिएको छ।

अध्याय एकसय अठहत्तर – प्रद्युम्नद्वारा भगवती वागीश्वरी सरस्वतीको ध्यान, शङ्खासुर र कच्छपासुरको शक्तिवर्णन, वाग्वतीद्वारा प्रद्युम्नलाई वरदान र सुलोचनाको उपाख्यान आदि विषयको चर्चा यस अध्यायमा गरिएको छ।

अध्याय एकसय उनान्असी – प्रद्युम्न र शङ्खासुरको घोर युद्ध र प्रद्युम्नद्वारा शङ्खासुरको वध इत्यादि विषय यस अध्यायमा समेटिएका छन्।

अध्याय एकसय असी – कच्छपासुरको शरीरवर्णन, प्रद्युम्न आदिको दानासुरसँग युद्ध, बलरामजीद्वारा दानासुरको वध र देवताहरूद्वारा बलरामको प्रशंसा आदिको चर्चा यस अध्यायमा गरिएको छ।

अध्याय एकसय एकासी – रणभूमिमा प्रद्युम्न र इन्द्रदमनको परस्पर आक्षेप, यादवहरूका साथमा दानवहरूको युद्ध र बलरामजीद्वारा निकुम्भ आदि दैत्यसेनाको वध, यस अध्यायका मुख्य विषय हुन्।

अध्याय एकसय बयासी – इन्द्रदमनद्वारा यादवसेनामाथि भारी आक्रमण, श्रीकृष्णको आज्ञाले युद्धभूमिमा गरुडको प्रत्याक्रमण, प्रद्युम्न र इन्द्रदमनको युद्ध, अन्त्यमा प्रद्युम्नद्वारा इन्द्रदमनको वधबारे यस अध्यायमा प्रकाश पारिएको छ।

अध्याय एकसय त्रियासी – ब्रह्माजी र नारदजीको संवादका क्रममा भगवती, सरस्वती र वाग्वती नदीको एकरूपता वर्णन गर्दै महिमाप्रकाशन, वाग्वतीसहस्रनामको चर्चा र सहस्रनामनिरूपण जस्ता विषयको उल्लेख यस अध्यायमा गरिएको छ।

अध्याय एकसय चौरासी – भगवान् श्रीकृष्णद्वारा चक्र प्रहार गरी वाग्वतीलाई छेक्न तयार गरिएको पुल र पर्खालको भेदन, सरोवरका रूपमा थुनिएकी वाग्वतीको उपत्यकाबाट बहिर्गमन, प्रद्युम्नद्वारा कच्छपासुरको संहार, प्रद्युम्नद्वारा कच्छपासुरको काखीमा लुकाइएको रत्नको ग्रहण तथा उपत्यकाका नदीहरूको बहिर्गमनको चर्चा यस अध्यायका मुख्य विषय हुन्।

अध्याय एकसय पचासी – श्रीकृष्णको यादवहरूका साथ नेपालका तीर्थहरूको यात्रा, श्रीकृष्णद्वारा अनेक तीर्थहरूको महिमावर्णन, तीर्थाटन गर्ने क्रममा शिवलिङ्गको पूजा र कर्मको महत्ताको प्रतिपादन आदि यस अध्यायका प्रतिपाद्य मुख्य विषय रहेका छन्।

अध्याय एकसय छयासी – नारदजीद्वारा सूर्यकेतु राजाको वर्णन, यादवसहित भगवान् कृष्णको महेन्द्रशिखरपर्वतमा यात्रा, सूर्यकेतुकी छोरी चन्द्रावतीका साथमा प्रद्युम्नको विवाह, श्रीकृष्णद्वारा इन्द्रदमन दैत्यको सुप्रभा नगरीको वर्णन, प्रभावती र प्रद्युम्नको समागम आदि विषयको वर्णन यस अध्यायमा गरिएको छ।

अध्याय एकसय सतासी – श्रीकृष्णद्वारा वज्रनाभ अर्थात् इन्द्रदमनद्वारा लुटिएका रत्नहरूको प्राप्ति र ती रत्नहरूलाई नागहरूका निमित्त प्रदान, नागहरूद्वारा श्रीकृष्णको पूजा, श्रीकृष्ण र इन्द्रको संवाद, इन्द्र आदि देवताहरूको देवलोकयात्रा आदि विषय यस अध्यायमा समेटिएका छन्।

अध्याय एकसय अठासी – भगवान् कृष्णद्वारा इन्द्रदमनको राज्यकोशबाट सम्पूर्ण द्रव्यहरूको निष्कासन, बलराम आदिको द्वारकायात्रा, भगवान् कृष्णको फेरि चाङ्गुनारायणपर्वतका लागि प्रस्थान, नेपाल र बद्रीनाथ आदि तीर्थहरूको वर्णन यस अध्यायका मुख्य विषय हुन्।

## निष्कर्ष

हिमवत्खण्डका एकसय अठासी अध्यायहरूको यस सारनिरूपणबाट पाठकहरूलाई समग्र हिमवत्खण्डको विषयबोध गर्न सघाउ पुग्नेछ भने अनुसन्धाताहरूलाई उपर्युक्त अध्यायगत सारको अध्ययनसँगै मूल ग्रन्थभित्र पसेर आफूले चाहेको विषयमा गहिरिएर अध्ययन एवं अनुसन्धान गर्न सजिलो हुनेछ।

ॐ

## तृतीय परिच्छेद
# हिमवत्खण्डको आन्तरिक सौन्दर्य

### ३.१ पृष्ठभूमि

सौन्दर्यमय हिमालयको वर्णनमा आधारित स्कन्दमहापुराणअन्तर्गत रहेको हिमवत्खण्ड ग्रन्थमा अभिव्यक्त सौन्दर्यसमीक्षा गर्दा आनुषङ्गिक रूपमा सौन्दर्यको तात्पर्य निरूपण गर्नु पर्ने आवश्यक देखिन्छ। सु–उपसर्ग रहेको उन्दी क्लेदने – धातुबाट निष्पन्न सुन्दर शब्दको भावमा सौन्दर्य शब्द बन्दछ। जुन वस्तु व्यक्ति अथवा भावले मनलाई पगाल्दछ र प्रसन्न तुल्याउँछ, त्यसलाई सुन्दर भनिन्छ। त्यो सुन्दर तत्त्वको अस्तित्वबोध गराउने शब्दलाई सौन्दर्य भनिन्छ। यहाँ हिमवत्खण्डमा निरूपित विषयहरूको सौन्दर्य केलाउनु हाम्रो अभीष्ट हो।

यस ग्रन्थमा साहित्यिक सौन्दर्य, पुण्यनदी, पुण्यतीर्थ र पुण्यक्षेत्रमा आधारित सौन्दर्य, सूचनासौन्दर्य, बोधसौन्दर्य, साधनासौन्दर्य र वस्तुगतसौन्दर्यलाई साक्षात्कार गर्न सकिन्छ। यस परिच्छेदमा ती सबैखाले सौन्दर्यलाई केलाउने प्रयास गरिएको छ।

### ३.२ काव्यात्मक सौन्दर्य

स्कन्दपुराणअन्तर्गत हिमवत्खण्डमा १८८ अध्यायमा अधिकांशतः अनुष्टुप् छन्दको प्रयोग भएको छ। उपमा रूपक आदि अलङ्कार, प्रसाद गुण, लाटी रीतिका साथै देवता, गुरु, राजा आदि मान्यजनमा अतिशय स्नेह गर्दा प्रकट हुने भावध्वनिको साम्राज्य रहेको छ।

हिमवत्खण्ड भावसाम्राज्य हो। केन्द्रीय भावपक्षको अधीनतामा प्रायः सबै रसको यसमा परिपाक भएको छ। सर्वप्रथम भावको उदाहरण दिएर रसहरूमध्ये मुख्य शृङ्गार र करुणका उदाहरणहरू प्रस्तुत गरिनेछन्।

(क) भाव–

हिमालयनन्दिनी भगवती गौरी, भगवान् गजानन, ज्योतिर्मय ब्रह्मरूप सूर्यनारायण, जगद्व्यापी भगवान् विष्णु र संहाराधिपति भगवान् रुद्र जसका आत्मा हुन्, सद्योजात, अघोर, तत्पुरुष, वामदेव र ईशाननामक पञ्चमुख ब्रह्मद्वारा विभूषित भगवान् पशुपतिले पृथिवी, जल, तेज, वायु र आकाशनामक पाँच महाभूतहरू तथा गन्ध, रस, स्पर्श र शब्दनामक तन्मात्राहरूद्वारा सत्त्व, रज र तमोगुणले सम्पन्न चराचरसहित त्रिलोकीको सन्धान गर्नुभयो। त्यस्ता छप्रकारका ऐश्वर्यसम्पन्न भगवान् सदाशिवलाई निरन्तर वन्दना टक्र्याउँछु भन्ने अर्थ रहेको मङ्गलाचरण हिमवत्खण्डको आरम्भमा गरिएको छ। यो पद्य यसप्रकार छ–

यस्यात्मा हिमशैलजा गणपतिः सूर्यो हि विष्णुर्हरः,
पञ्चास्यै सुविभूषितः पशुपतिस्तेषां च पञ्चात्मकैः।
त्रैलोक्यं सचराचरं त्रिगुणजं पञ्चात्मभिः सन्दधे,
योऽजस्रं हि रसादिभिश्च भगवाँस्तस्मै नमः शम्भवे॥ (हि.ख., १/१/१)

षडैश्वर्यसम्पन्न भगवान् सदाशिवप्रति ग्रन्थकारका हृदयमा रहेको अगाध श्रद्धा र भक्तिको प्रकाशन गर्ने यो पद्य शिवविषयक रतिभावको सुन्दर उदाहरण हो।

(ख) रस–

(अ) शृङ्गाररस

प्रद्युम्न र प्रभावतीको सुमधुर मिलनपछि गान्धर्व विवाहसमेत सम्पन्न भयो। प्रद्युम्नले काखमा राखेकी प्रभादेवीलाई मीठा वचनले सम्झाए र सान्त्वना दिए। मुखमारुतले सुवासित गराउँदै विस्तारै गालामा चुम्बन गरे।

भमराले कमललाई टेकेझैं उनले रमणी प्रभावतीको ओठमा टेक्दै मुखरस पनि पान गरे। त्यसपछि रतिशास्त्रका पण्डित एवं मायां गर्न सिपालु प्रद्युम्नले सुन्दर नितम्बले सुहाएकी प्रभावतीलाई राम्ररी अँगालो मारे। भनिएको छ–

स्वाङ्कस्थां स प्रभादेवीं मधुरयैश्च सान्त्वयन्। चुचुम्ब शनकैर्गण्डे वासयन् मुखमारुतैः॥
प्रभावत्याः पपौ वक्त्रं पद्मं मधुकरो यथा। आलिलिङ्ग च सुश्रोणीं क्रमेण रतिकोविदः॥ (हि.ख., ६/१७५/३१–३२)

(आ) करुणरस

हिमवत्खण्डमा आफ्ना बाबु हिमालयले विष्णुसँग आफ्नो विवाह निश्चित गरेपछि शङ्करलाई मन पराउने र विवाह गर्न चाहने गौरी साह्रै दुःखी भइन् र घरबाट आफ्नी एउटी सङ्गिनी हंसीका साथ हिमालयको कुनै अग्लो चुचुरोमा गई तप गर्न थालिन्। त्यसपछि हिमालयको परिवारमा रुवावासी चल्यो। उनी छोरी खोज्दै रनवनमा भौँतारिएर विलाप गर्दै भन्न थाले– हे नानी ! तिमी आफ्नी प्यारी आमालाई छाडेर कहाँ गयौ ? कसैले तिमीलाई वनमा पुऱ्याएर प्राणै पो लियो कि ? हे वंशकी गहनाजस्ती मेरी छोरी ! कहाँ गयौ ? सो पद्य यस्तो छ–

हा पुत्रि ! क्व गतासि त्वं परित्यज्य स्वमातरम्। हता केनाऽप्यरण्ये त्वं हा पुत्रि ! कुलभूषणे॥ (हि.ख. ३/५९/३९)

(ग) प्रकृतिवर्णन–

हिमवत्खण्ड हिमालय, हिमशृङ्खला, नदी, कुण्ड, हरिया वन सबैको सामूहिक नाम हो र प्रकृतिसौन्दर्यको भण्डार हो। हिमवत्खण्डमा गरिएको वर्णन पनि पूर्णतया प्रकृतिमय छ। यहाँ त्यसका केही झिल्का सङ्क्षेपमा प्रस्तुत गरिँदैछ।

कुनै समयमा भगवान् शङ्कर कैलास छाडी श्लेष्मान्तक वनमा मृगरूप लिएर प्रकृतिसाक्षात्कार गर्दै हुनुहुन्थ्यो। देवताहरू उहाँलाई खोज्दै खोज्दै श्लेष्मान्तक वनमा पुगे। त्यहाँ तिनीहरूले चाँप, अशोक, बकुल, बकाइनो, खरी आदि वृक्षलाई पुष्प र फलले झकिझकाउ भई सुहाएको देखे। करवीर, कदम्ब, सिन्दुवार पुन्नाग, जाही आदि अनेक पुष्पवृक्षहरूको दिव्य सौन्दर्य नजर गरे। फेरि साल, बेल, आँप, चाँप, दारिम, बिमिरो, केरा, कटहरका वृक्षलाई पाकेका र पाक्दै गरेका फलसहित झुकिरहेको अवस्थामा देखे। त्यहाँ अनेक निकुञ्ज थिए। तिनमा वृक्षको बाक्लो छाया परेको थियो, फूलहरूको सुगन्धले वातावरणलाई सुगन्धमय तुल्याएको थियो। फल र फूलले नुगेका लता–वल्लरीहरूले ती निकुञ्जको शोभा बढाइरहेका थिए। मृगका झुण्ड उफ्रिरहेका थिए, गौरीगाई चरिरहेकी थिइन्। यही विषयलाई पद्यमा यसरी व्यक्त गरिएको छ –

द्रुमच्छायानिकुञ्जैश्च कुसुमैः सुमनोहरैः। लताभिः फुल्लपुष्पाभिर्विविधाभिर्विराजितम्॥
जीवञ्जीवमयूरैश्च कूजद्भिश्चैव कोकिलैः। भ्रमद्भिश्च द्विरेफैश्च समन्तादुपशोभितम्॥ (हि.ख. ४/८१/४३–४४)

यसरी श्लेष्मान्तक वनको सौन्दर्य पस्कँदा ग्रन्थकारले भगवान् शिवले वसन्त आदि ऋतुमा ऋतुअनुसारको आचार अँगाली विहार गरेको पनि वर्णन गरेको पाइन्छ। उदारणार्थ त्यहाँको एउटा पद्य–

कपिशार्दूलगवयैः व्याघ्रहुण्डारकैस्तथा। सम्प्रेक्ष्य तद्वनं दिव्यं देवलोकमनोहरम्॥ (हि.ख. ४।८१।४६)

३.३ बोधसौन्दर्य

हिमवत्खण्ड ज्ञानको खजाना हो। हिमालयका विभिन्न क्षेत्र, तीर्थ, नदी, अरण्यानी, हिमशृङ्गको वर्णन र कथांशका रूपमा प्रयुक्त स्तुतिहरूमा प्रचुर आध्यात्मिक एवं धार्मिक ज्ञानका सामग्री भरिएका छन्। यहाँ उदाहरणका लागि केही बोधसामग्री उद्धृत गरी प्रस्तुत गरिँदैछ।

(क) ज्ञान

हिमवत्खण्डमा भगवान् बुद्धले दैत्यहरूलाई दिनुभएको ज्ञानोपदेशको सारांश यस प्रकार छ– संसारमा जन्म र मृत्युको जाँतोमा जीवहरू पिस्सिएका छन्। यो क्रम अनादि समयदेखि प्रवहमान छ। कुनै समयमा विश्वनियामक परमात्माबाट छुटेका जीवहरू ईश्वरीय मायामा रुमल्लिएर 'तँ–तेरो र म–मेरो'को फन्दामा परी काम, क्रोध, लोभ, मोह, मद, मात्सर्यलाई अँगालेर भौतिक उन्नतिप्राप्तिको मार्गमा अनवरत हिँडिरहेका छन्। असार आउँछ, धान रोप्छन्, मंसिर आउँछ, धान स्याहार्छन् र फेरि असार आएपछि धानको रोपाईंमा लाग्छन्। यो क्रम अनवरत चलिरहेको हुन्छ। ती जीवहरूले तन्नेरीबाट प्रौढ अवस्थामा र प्रौढावस्थाबाट वृद्धावस्थामा पुगेको थाहा नै पाउँदैनन्। जिन्दगी यत्तिकै समाप्त हुन्छ।

परमात्माबाट छुटेर आएपछि मायाको फन्दामा परेको जीव हुँ भन्ने तत्त्वज्ञान उनीहरूलाई भएकै हुँदैन। आफ्नो यथार्थ वा सत्य स्वरूपको विस्मरण नै अज्ञान हो। जबसम्म स्वरूपज्ञान हुँदैन तबसम्म तिर्सना, पाप, झमेला र दुःखको पनि अन्त हुँदैन। भोगमा लिप्त हुँदा क्षणिक सुखको प्रतीति भए पनि परिमाणमा दुःख नै हुन्छ। सांसारिक सन्ताप, दुःख र झमेलाको निवृत्ति अज्ञानको कालो पर्दा च्यातिएपछि मात्र हुन्छ। त्यसका लागि सद्गुरुको आश्रय, सत्सङ्ग, सत्शास्त्रको अध्ययन र ईश्वरोपासना गर्नुपर्दछ। उक्त कार्यहरूबाट मन निर्मल हुँदै जान्छ, पाप काटिँदै जान्छन्, मोह ममता निवृत्त हुन्छन् र बुद्धि सफा हुन्छ। त्यसपछि गुरु एवं ईश्वरको कृपा हुन्छ र क्रमशः ज्ञानालोकका किरण झलमल्ल हुन थाल्दछन्। मनमा विवेक उत्पन्न हुन्छ र वैराग्यले ठाउँ पाउँछ। गुरुमा र ईश्वरमा भक्ति बढ्दै जान्छ अनि जीव शिवत्व प्राप्त गर्न ज्ञानको राजमार्गमा अग्रसर हुन्छ।

यसै क्रममा प्रारब्धका पुण्यमय एवं पापमय संस्कार पनि मेटिँदै जान्छन्। त्यसैले आफ्नो बिर्सेको स्थायी स्वरूपको बोध गर्न चाहने साधकले सधैँ मोक्षरूप लक्ष्य सिद्ध गर्न ज्ञानकै लागि प्रयास गर्नुपर्दछ। यसै प्रयासको क्रममा मन, बुद्धिमा धूलो पुछिएको ऐनाकोझैँ निर्मलता छाएपछि बुद्धिमा विशुद्ध आत्माको प्रतिबिम्ब पर्दछ। त्यसबेला गुरुले पियाएको ज्ञानामृतले उसलाई परमात्माको नजिकमा पुऱ्याउँछ। ज्ञानामृतद्वारा तृप्त भएको योगीका लागि अरू कुनै कर्म आवश्यक हुँदैनन्। त्यसैले संसारमा ज्ञान बाहेक, पवित्र र पापनाशक अरू कुनै तत्त्व छैन। उक्त विषयसँग सम्बद्ध केही पद्य यसप्रकार छन् –

संसारबीजमज्ञानं संसारज्ञः पुमान् यतः। ज्ञानात्तस्य निवृत्तिः स्यात् प्रकाशात् तमसो यथा॥
क्लेशयुक्तः प्रसन्नत्वान् मुक्त इत्यभिधीयते। तस्मादज्ञानमूलानि सर्वदुःखानि देहिनाम्॥
ज्ञानेन च तदज्ञानं निवर्तेत न कर्मभिः। नास्ति ज्ञानादृते पुंसां पुण्यपापपरिक्षयः॥
मोक्षार्थी पुरुषस्तस्माज् ज्ञानमेव सदाभ्यसेत्। मार्ज्यमानः सदा यद्वद् दर्पणो निर्मलो भवेत्॥
ज्ञानाभ्यासात्तथा पुंसां बुद्धिर्भवति निर्मला। ज्ञानामृतेन तृप्तस्य कृतकृत्यस्य योगिनः॥
नैवास्ति किञ्चित् कर्तव्यमस्ति चेन् न स तत्त्ववित्। नास्ति ज्ञानात् परं किञ्चित् पवित्रं पापनाशनम्॥

(हि.ख. ६५/३९, ४९, ४५–४८)

(ख) तपस्या

हिमवत्खण्ड तपोमय इतिवृत्तले भरिएको ग्रन्थ हो। यसमा सैकडौँ तपस्वीहरूका पवित्र गाथा रहेका छन्। शरीर, मन एवं इन्द्रियलाई बाँधेर परमेश्वरको नामजप एवं चिन्तन गर्दै तप गर्ने तपस्वीले कुन कुरा प्राप्त गर्दछ भन्ने जिज्ञासा हुनु स्वाभाविक हो। हिमवत्खण्डले त्यो जिज्ञासा मेटाइदिएको छ। सात कोशी, सात गण्डकी, चौसट्ठी शिवलिङ्ग, सैकडौँ हिमशिखर एवं कुण्ड र अनगिन्ती नदीहरूमा ऋषि, मुनि, जाति, जनजाति, सबैले तपस्या गरेको कुरा हिमवत्खण्डबाट अवगत गर्न सकिन्छ।

हिमवत्खण्डमा प्रस्तुत इतिवृत्तअनुसार एकदिन नारदजीले वरुणसमक्ष गएर निर्ऋतिले तपस्या गरी नैर्ऋत्य दिशाको दिक्पाल बनेको जानकारी गराउनुभयो। त्यो थाहा पाएर वरुणले म पनि दिक्पाल हुन चाहन्छु, मैले के गर्नुपर्छ भनी प्रश्न गर्दा नारदजीले भन्नुभयो – तपस्याबाट धर्म, मानवशरीर, ऐश्वर्य, देवशरीर, स्वर्ग, मोक्ष, लक्ष्मी, साम्राज्य, पुत्र–पुत्री, संसारको वैभव र सृष्टिभित्रका समग्र विषय प्राप्त हुन्छन्। तपस्याद्वारा सम्पूर्ण संसार, सबै देवता र ब्रह्मा, विष्णु एवं शिवलाई वशवर्ती बनाउन सकिन्छ।

वास्तवमा हाम्रा उपनिषद्, ब्राह्मण आदि सबै आदर्श ग्रन्थहरूले पनि तपस्याको अपार महिमा बताएका छन्। हाम्रो परम्पराले पनि तप र तपस्वीलाई सम्मान गर्दै आएको छ। तपस्याको महिमाको गायन हिमवत्खण्डमा यसरी गरिएको छ–

तपसा लभ्यते धर्मस्तपसा नृकलेवरम्। तपसा प्राप्यते भूतिर्देवदेह स्तथा पुनः॥
तपसा लभ्यते मुक्तिरकामेन यदा चरेत्। तपस्या लभ्यते स्वर्गो लक्ष्मीश्च तपसा तथा।
मेदिनीशस्तथा पुत्रः तपसा लभ्यते जगत्। तपसा प्राप्यते सर्वं सुदुर्लभं न विद्यते॥
तपसा भगवान् रुद्रो वश्यो विष्णु स्तथाविधिः। जगच्च तपसा वश्यं किं पुनः क्षुद्रमानुषाः॥

(हि.ख. १/१६, २९–३२)

(ग) धर्म र अधर्म

वेदविहित पवित्र कर्म एवं धारणालाई धर्म भनिन्छ। यिनै पवित्र कर्मलाई पुण्यकर्म पनि भनिएको छ। उत्तम धारणाको जगमा गरिने पुण्यकर्महरू तीर्थस्नान, दान, पूजा, तपस्या, उपासना, व्रत, उपवास, तीर्थाटन, परोपकार, भगवत्कीर्तन, स्तुति आदि अनेक रूपमा फैलिएका छन्।

धर्मले नै पृथिवीलाई सत्यवती तुल्याउँछ। धर्मबाट नै जीवन सञ्चालन गर्ने धनको प्राप्ति हुन्छ। धर्मले भाग्यवान् बनाउँछ। धर्मद्वारा सन्तति प्राप्त हुन्छ। धर्मले चिरञ्जीवी बनाउँछ, धर्मबाट शतायु बन्न सकिन्छ। धर्म गर्दा मन प्रसन्न र आनन्दित हुन्छ, धर्मबाट सुख प्राप्त हुन्छ र मनोरथसिद्धि हुन्छ। हिमवत्खण्डमा अनेक रूपमा रहेको धर्मलाई शिवकै रूप मानिएको छ। धर्म शिवरूप छ र शिव धर्मरूप हुनुहुन्छ। सम्पूर्ण पृथिवी धर्मकै आडमा अडिएको छ। यही तथ्यलाई यसरी बताइएको छ–

धर्मेण संस्थिता पृथ्वी सपर्वता ससागरा। सत्यवती च धर्मेण धर्माज्जीवनदं धनम्॥
चिरञ्जीवति धर्मेण पुरुषायुश्च लभ्यते। धर्मेणानन्दयेच्चेतः सुखं धर्मेण लभ्यते॥
या वाञ्छा विद्यते स्वान्ते धर्मेण सा प्रलभ्यते॥ (हि.ख. १/२०/९-१२)

हिमवत्खण्डमा धर्मको वर्णनका साथै अधर्म वा पापको पनि परिचय दिइएको छ। काम, क्रोध, लोभ, मोह, भय, मात्सर्य, मद, मात्सर्य, क्लेश आदि पापकै परिणाम हुन्। भनिएको छ-

लोभमोहौ तथा क्रोधो मदो मात्सर्यमेव च। दुःखक्लेशौ च दारिद्र्यमधर्मेण प्रलभ्यते॥ (हि.ख. १/२०/१३)

(घ) अहिंसा र हिंसा

हाम्रा अन्य शास्त्रीय ग्रन्थहरूमा भैँ हिमवत्खण्डमा पनि सूत्रात्मक रूपमा हिंसा र अहिंसाको चर्चा गरिएको पाइन्छ। तदनुसार अहिंसा परम धर्म हो, अहिंसा परम यज्ञ हो, परम व्रत हो र अहिंसा परमेश्वरको परम पूजा हो। जस्तै-

अहिंसा परमो धर्मश्चाहिंसा परमो मखः। व्रतं परमहिंसा च अहिंसा परमो बलिः॥ (हि.ख. ४।६५।२९)

यसैगरी हिंसाको स्वरूप बताउँदै भनिएको छ- हिंसा परम अधर्म हो, हिंसा तीव्र वेदना हो, हिंसा परम पाप हो, हिंसा आयुनाशक कर्म हो, हिंसा कीर्ति, यश र धनको नाश गर्ने क्रिया र विचार हो। हिंसामा लिप्त मानिस कहिल्यै पनि माथि जान सक्दैन र हिंसा नरकको कारण हो। त्यसैले आफ्नो कल्याण चाहने मानिसले हिंसाको परित्याग गर्नुपर्दछ।

हिंसाऽधर्मः परो ज्ञेयो हिंसा च तीव्रवेदना। हिंसा च परमं पापं हिंसा चायुर्विनाशिनी॥
हिंसया हन्यते शीघ्रमायुः कीर्तिर्यशो धनम्। क्षिप्यते नरके देहः तस्मात्तां परिवर्जयेत्। (हि.ख. ४/६५/३०-३१)

धर्मका कारकतत्त्वबारे भनिएको छ- श्रद्धा, सत्य, दया, दान, शौच, इन्द्रियनिग्रह, शिवपूजा, अग्निहोत्र, र सन्तोषमा आश्रित चिन्तन, यी सबै धर्मका सार हुन्। विशेषरूपमा श्रद्धापूर्वक पालन गर्दा शीघ्र फलप्राप्ति हुन्छ। वास्तवमा धर्मसमान कुनै मन्त्र छैन, दानबराबर अर्को गति छैन, रुद्रसमान अरू देवता छैनन् र मोक्षसमान अर्को सुख हुँदैन। भनिएको छ-

क्षमा सत्यं दया दानं शौचमिन्द्रियनिग्रहः। शिवपूजाग्निहोत्रश्च सन्तोषाश्रयभावना॥
नास्ति धर्मसमो मन्त्रो नास्ति दानसमा गतिः। नास्ति रुद्रसमो देवो नास्ति मोक्षसमं सुखम्॥
(हि.ख. ३/३९/१०१-१०२,१०५,१०६)

(ङ) श्रद्धा

श्रत् अर्थात् सत्यलाई धारण गर्ने भावनालाई श्रद्धा भनिन्छ। हिमवत्खण्डमा श्रद्धाको महत्त्व बताउँदै भनिएको छ- श्रद्धापूर्वक तीर्थयात्रा, श्रद्धापूर्वक तीर्थस्नान, श्रद्धापूर्वक सुपात्रमा दान, श्रद्धापूर्वक हवन, श्रद्धापूर्वक मन्त्रजप, श्रद्धापूर्वक आराध्यदेवताको ध्यान र श्रद्धापूर्वक धर्मानुसरण गर्दा श्रद्धामय फलको प्राप्ति हुन्छ।

जुन मानिसले क्रोध या अश्रद्धाका साथ माथि बताइएका कर्म गर्दछन् ती सम्पूर्ण कर्म खरानीमा हवन गरेसमान हुन्छन्। भनिएको छ-

श्रद्धया गम्यते तीर्थं श्रद्धया स्नायते बुधैः। श्रद्धया दीयते दानं श्रद्धया हूयते हविः॥
श्रद्धया जप्यते मन्त्रः श्रद्धया ध्यायते शिवम्। श्रद्धया लभ्यते धर्मः श्रद्धया लभ्यते फलम्॥
क्रोधेनाश्रद्धया यच्च क्रियते कर्म मानुषैः। विलीयते च तत्सर्वं भस्मनीव यथा हुतम्॥ (हि.ख. ३/३९/१०२-१०४)

(च) मानवपतनका कारण

हिमवत्खण्डमा मानवहरूको पतन कुन कारणले हुन्छ भन्ने प्रश्नको उत्तर दिँदै भनिएको छ- सम्पदा, स्वरूपसौन्दर्य, यौवन र धनको अभिमान गर्ने मानिसहरूको पतन हुन्छ। ती सधैँका लागि उक्त विषयवस्तुबाट वञ्चित हुन्छन्। जो रजोगुणी भई अहङ्कारका साथ सुखभोग र कामनापूर्ति गर्दछन् त्यस्ता विवेकहीन नरनारीको सद्बुद्धिनाश हुन्छ र बुद्धिभ्रष्ट भएपछि तिनको पतन हुन्छ। आफ्नै आत्मासमान मानिएका पशुपक्षी आदि जीवहरूको हत्या गरी शरीर पुष्टिमा लागेका मानिसहरूको पतन हुन्छ।

जसले धन, ऐश्वर्य, पद आदि कारणबाट मानेर विद्वान् एवं ब्रह्मज्ञानीहरूको तिरस्कार गर्दछन् तिनको पतन हुन्छ। मुक्ति र भुक्ति दिने देवता, गुरु आदिको तिरस्कार गर्ने मानिस सपरिवार नाशमा प्राप्त हुन्छन्।

माता, पिता, गुरुजन, नारी, दैवीतत्त्व, नदी, कुण्ड, तीर्थ आदिको अवहेलना गर्ने मानिसको पनि निश्चय नै पतन हुन्छ।

तिनका निन्दकहरूको विशेषरूपमा पतन हुन्छ। त्यसैले मानिसले दुर्लभ मानवजीवन पाएर अज्ञानको वशमा परी आफ्नो पतन हुने कार्य गर्न हुँदैन। भनिएको छ–

वसुभि र्ये च गर्वन्ति रूपसौन्दर्ययौवनैः। सर्वतस्ते पतिष्यन्ति तैस्त्यक्ताश्च न संशयः॥
रजोगुणैश्च ये केचित् विराजन्ते सुखैषिणः। तादृशानां भवेन्नूनं बुद्धिभ्रंशोऽविवेकिनाम्॥
निर्दया ये जनाश्चेह घ्नन्ति पशून् समात्मनः। तद्विग्रहाः पतिष्यन्ति लोभादज्ञानतो मुहुः॥
तिरस्कुर्वन्ति ये विप्रान् श्रीमदान्मीलितेक्षणाः। तेऽपि चाशु पतिष्यन्ति सर्वदेवमयान् भृशम्।
ये हेलयन्ति देवाँश्च भुक्तिमुक्तिफलप्रदान्। तेऽपि सत्यं पतिष्यन्ति परिवारैः समं तदा॥
ये हेलयन्ति वै तीर्थमवधूतान् तपस्विनः। पतिष्यन्ति जनास्ते च निन्दकाश्च विशेषतः॥ (हि.ख. ५२/२६–३१)

(छ) दैवविचार–

आफ्ना पिताले आफूलाई तिरस्कार गरेको पीडाले पिल्सिएका ध्रुवले आफ्नी आमासँग दुःख पोखेका थिए। त्यसबेला उनकी बुद्धिमती आमाले उनलाई सम्झाउँदै भनेकी थिइन्– बाबु ! तिमी दुःख नमान। पूर्वजन्ममा कसैलाई सुख दिने काम गरिएको भए यस जन्ममा आफूलाई सुख प्राप्त हुन्छ। यसैगरी पूर्वजन्ममा आफूले दुःख दिने काम गरिएको भए यस जन्ममा आफूलाई दुःख प्राप्त हुन्छ। राजाको शरीर, ब्राह्मणको शरीर, देवताको शरीर र मानिसको शरीर भाग्यबाटै प्राप्त हुन्छ। पूर्वजन्ममा गरिएका कार्मलाई नै दैव वा भाग्य भनिन्छ। यो कुरा राम्ररी मनले बुझेपछि धीर पुरुषले चिन्ता गर्दैनन्। यही कुरालाई हिमवत्खण्डमा यसरी बताइएको छ–

पुत्र मा कुरु दुःखं त्वं पूर्वजन्मनि यत्कृतम्। दुःखं वा च सुखं वत्स ! सर्वं तदिह लभ्यते॥
दैवात् प्राप्नोति तत् सर्वं राजाङ्गं विप्रविग्रहम्। नरदेहं च देवाङ्गं चतुर्विधं कलेवरम्॥
प्राग्जन्मनि कृतं कर्म तद् दैवं हि न संशयः। ज्ञात्वात्मनेह चित्तेन धीरस्तत्र न मुह्यति॥ (हि.ख. १/२२/१०–१२)

३.४ सूचनासौन्दर्य

हिमवत्खण्डमा जीवनका विविध पक्षमा पालन गर्नुपर्ने र बुझ्नुपर्ने विभिन्न सूचनाहरू प्रवाहित गरिएका छन्। यहाँ पाठकहरूको जानकारीका लागि केही सूचनीय तथ्य प्रकाशित गरिँदैछ।

(क) सपनाको फल–

चन्द्रागिरिका राजा इन्द्रदमनले इन्द्रलाई पराजित गरी स्वर्ग र भूमण्डलमा समेत अधिकार कायम गरी चन्द्रागिरिको डाँडामा दरबार बनाएर शासन चलाएका थिए। उनकी बहिनी प्रभावती अत्यन्त सुन्दरी र गुणवती थिइन्। उनले सपनामा श्रीकृष्णका सुपुत्र प्रद्युम्नसँग मीठो संवाद र आनन्दमय विहार गर्दै थिइन् अकस्मात् बिहानी भयो र उनको निद्राभङ्ग भयो। त्यति मायालु र त्यतिविधि राम्रा सुन्दर युवासँग एकान्तमिलनको आनन्द खण्डित हुँदा उनी दिक्क भइन्। उनले आफ्नी सङ्गिनी हंसीलाई सपनाका सबै कुरा बताइन् र त्यस सपनाको फलबारे जिज्ञासा राखिन्।

हंसीले प्रभावतीलाई सम्बोधन गर्दै भनिन्– हे राजकुमारी ! मानिसहरूले निद्रामा अनुभव गरेको सपनाका विषयमा म तिमीलाई बताउँछु। रात्रिको प्रथम याममा देखिएको सपनाले १ वर्षभित्र फल प्रदान गर्दछ। दोस्रो याममा देखिएको सपनाले ८ महिनाभित्रमा फल दिन्छ। तेस्रो याममा देखिएको सपनाले ३ महिनामा फल प्रदान गर्दछ। चौथो याममा देखिएको सपनाले १५ दिनभित्र फल दिन्छ। पूर्ण सूर्योदय हुनुअगावै अरुणोदयकालमा देखिएको सपनाले १० दिनभित्र फल प्रदान गर्दछ।

राम्रो सपना देखेर जागेपछि फेरि निदाउनु हुँदैन, निदाएमा सपना निष्फल हुन्छ। हे राजकुमारी ! तिमीले अरुणोदयकालमा सपना देखेकी हुनाले तिम्रो सपना १० दिनभित्र साकार हुनेछ। तिमीले आफ्ना प्राणभन्दा पनि प्यारा प्रद्युम्नलाई छिट्टै पतिका रूपमा प्राप्त गर्नेछौ। यही कथनलाई हिमवत्खण्डमा यसरी व्यक्त गरिएको छ–

यदि स्वप्स्यसि स्वप्नान्ते स्वप्नो भवति निष्फलः। दृष्टे स्वप्ने च हातव्या निद्रा सञ्चरणं हितम्॥
भवत्या सोऽधुना दृष्टः काले वै चारुणोदये। भविष्यति फलं रम्यं दशाहाभ्यन्तरे दिने॥ (हि.ख. ६/१७४/१६, १७)

(ख) चौरासीलाख जुनी

चौरासीलाख जुनीमा चक्कर काटेपछि मानवजुनी प्राप्त हुन्छ भन्ने कुरा लोक र शास्त्रमा प्रसिद्ध छ। ती चौरासीलाख जुनीकुन कुन हुन् भन्ने कुरा हिमवत्खण्डमा सङ्क्षेपमा उल्लेख गरिएको छ।

पुण्यहीन मानिसहरूले अनेक जुनी लिएर पापका फल भोग्दछन्। ती जुनीहरूमध्ये कृमि(कीरा)वर्गका अनेक प्रजातिको संख्या १० लाख रहेको छ। चराचुरुङ्गीको प्रजातिको संख्या ३० लाख बताइएको छ। वृक्ष–वनस्पति आदि स्थावर प्रजातिको संख्या २० लाख रहेको छ। जलचर जीवका प्रजातिको संख्या ११ लाख रहेको छ। पशुका प्रजातिको संख्या १० लाख छ र मानवका प्रजातिको संख्या ४ लाख छ। यी सबै संख्याको योग गर्दा ८४ लाख हुन्छ। अज्ञानजन्य पापबाट ती ती योनिहरूमा भौंतारिँदै जीवले उक्त सबै योनिमा जन्म लिएर पार गरेपछि मात्र स्वस्थ मानवका रूपमा जन्मग्रहण गर्दछ। सुन्दर एवं बुद्धि–विवेकले सम्पन्न मानवको जुनी पाएर पनि मानवजीवनलाई सफल तुल्याउने सत्कर्म नगरी पाप कर्ममा नै लिप्त हुने जीव "पुनर्दरिद्री पुनरेव पापी" यस सिद्धान्तअनुसार फेरि नारकीय यातनाको भोग गरी उक्त चौरासीको चक्रमा पर्दछ। (हिमवत्खण्ड ४/६६/६६–६८)

(ग) अयोग्यवर

कन्यादान गर्दा वर्जनीय वरहरूको प्रकृतिबारे हिमवत्खण्डमा सूचना प्रदान गरिएको छ। तदनुसार कुनै पनि कन्याका अभिभावकले आफ्नी कन्या स्थावर, निश्चल, कुष्ठरोगी, कानो, लङ्गडो, बहिरो, वाणीहीन, दीर्घरोगी, निर्गुण, नपुंसक, कुहिरे, डेरो, धेरै वा थोरै अङ्ग भएको, भिन्न जातिको, जाति नै स्पष्ट नभएको, आफ्नै गोत्रको अथवा छुल्याहा स्वभावको वरका हातमा दिनु हुँदैन। (हिमवत्खण्ड १/७/१५–१७)

(घ) वायुका सात स्कन्ध

हिमवत्खण्डमा गगनमण्डल र त्यसमाथिका विभिन्न लोकहरूमा विचरण गर्ने वायुका सात स्कन्धहरूको उल्लेख गरिएको छ। तदनुसार धर्तीदेखि मेघमण्डलसम्म विचरण गर्ने वायुस्कन्धलाई आवह भनिन्छ। मेघमण्डलदेखि सूर्यमण्डलसम्म विचरण गर्ने वायुस्कन्धलाई प्रभव भनिन्छ। सूर्यमण्डलदेखि चन्द्रमण्डलसम्म विचरण गर्ने वायुलाई उद्भव भनिन्छ। चन्द्रमण्डलदेखि नक्षत्रमण्डलसम्म विचरण गर्ने वायुलाई संवह भनिन्छ। नक्षत्रमण्डलदेखि ग्रहमण्डलसम्म विचरण गर्ने वायुलाई विवह भनिन्छ। ग्रहमण्डलदेखि सप्तर्षिमण्डलसम्म विचरण गर्ने वायुलाई परावह भनिन्छ। सप्तर्षिमण्डलदेखि ध्रुवमण्डलसम्म विचरण गर्ने वायुलाई परिवह भनिन्छ। उक्त सबै वायुस्कन्धहरूले आफ्नो आफ्नो क्षेत्रमा तोकिएअनुसारका कर्म गर्दछन्। यही तथ्यलाई यहाँ यसरी बताइएको छ–

पृथिव्यां प्रथमः स्कन्धः स्थित आमेघमण्डलम्। आवहो नाम मेघानां व्यूहनावाहनादिकृत्॥
द्वितीयः प्रभवो नाम निबद्धः सूर्यमण्डले। तृतीय उद्भवो वायुस्कन्ध इन्दु प्रतिस्थितः॥
चतुर्थः संवहः स्कन्धः स्थितो नक्षत्रमण्डले। ग्रहेषु पञ्चमः सोऽपि विवहः परिकीर्तितः॥
स्कन्धः परावहः षष्ठः स्थितः सप्तर्षिमण्डले। वायुः परिवहो नाम निबद्धः सप्तमो ध्रुवे॥ (हि.ख. १/६/२५–२८)

(ङ) स्वयंवरविवाह

प्रद्युम्नले प्रभावतीको सौन्दर्यबारे जानकारी पाएर विवाह गर्ने मन बनाएका थिए र प्रभावतीले सपनामा प्रद्युम्नको सौन्दर्यपान गरिसकेकी थिइन् तर ती दुबैको भेट हुन सकेको थिएन। प्रभावती दिनहुँ प्रद्युम्नको प्रेममा डुबेर पागल हुनै लागेकी थिइन्। हंसी नामकी सखीको कुशल संयोजनमा प्रद्युम्न र प्रभावतीको चन्द्रागिरिदरबारमा गुप्त भेट भयो। बाहिर नाचगान भइरहेको थियो। कसैलाई यो भेटघाटबारे थाहा थिएन। एकाएक भेट हुँदा प्रेमविभोर भएका प्रद्युम्नले विवाहभन्दा पहिले वर्जना गरिएको स्तनस्पर्श, दन्तक्षत र नखक्षत गर्न लागे। प्रभावतीले लज्जित हुँदै भनिन्– हे प्रिय ! तपाईं रतिक्रीडाको पूर्वाङ्गका कामकेलि नगर्नुहोस्। हजुर कन्यादूषक हुनुहुनेछ। हजुरले देशकालको शुभाशुभ विचार गरी मसँग गान्धर्वविवाह गर्नुहोस्। प्रभावतीको प्रेम र मर्यादाप्रियता दुबै बुझेर प्रद्युम्नले मन्त्र उच्चारण गरी तेजिलो अग्निमय मणिमा होम गरे। आफ्ना हातले प्रभावतीको हात समातेर मणिमा रहेका अग्निको सात फेरो लगाए। पूर्णचन्द्रमालाई साक्षी राखी प्रभावतीको शिरमा सिन्दूर भरे। आफूले मनले चिताएका ब्राह्मणलाई दक्षिणा दिएपछि प्रेमातुर प्रभावतीलाई काखमा लिए। यसरी वैवाहिक मर्यादा कायम गरी प्रद्युम्न र प्रभावती सधैँका लागि पति–पत्नी भए। यो आतुरकालिक संन्यासजस्तै आतुरकालिक स्वयंवर सम्पन्न भयो।

(हिमवत्खण्ड ६/१७५/२७–३०)

(च) नारीसम्मान

मनुस्मृतिकार मनुले "यत्र नार्यस्तु पूज्यन्ते रमन्ते तत्र देवताः" अर्थात् जहाँ नारीको पूजा हुन्छ त्यहाँ देवताहरू रमाउँछन् भनी नारीजातिको सम्मान गर्ने हाम्रो प्राचीन परम्परा उजागर गरेका छन्। वेदान्तसम्बन्धी कुनै कुनै ग्रन्थमा बाहेक सम्पूर्ण प्राच्य वाङ्मयमा नारीसम्मानका विषयमा उच्च मर्यादापूर्ण भावना व्यक्त गरिएको छ।

हिमवत्खण्डमा पनि साक्षात् भगवान् शङ्करकै मुखबाट पार्वतीलाई सम्बोधन गर्दै नारीको सम्मान गर्नुपर्ने विषय व्यक्त गरिएको छ। भगवान् भन्नुहुन्छ– हे गौरी ! नारीहरूलाई कुनै पनि किसिमबाट दण्डित गर्न हुँदैन। कुनै पनि दोष वा अपराधले नारीहरूलाई दूषित गराउँदैन। उनले मदिरापान गर्दछिन् भने पनि सभाहरूमा चर्चा गर्न हुँदैन। खुट्टाका पाँच औँलादेखि सिउँदोसम्म नारीहरू चोखा हुन्छन् किनकि ब्रह्माजीले उनीहरूलाई त्यसरी नै पवित्र तुल्याउनुभएको छ। पुरुषहरू मेरा मूर्ति हुन् भने नारीहरू तिम्रा मूर्ति हुन्। हे आर्या ! म लगायत सबै पुरुषहरूभन्दा नारीहरू श्रेष्ठ छन्।"

शिवपुत्र कुमारजी अगस्त्यलाई सम्झाउँदै भन्नुहुन्छ– मेरा मातापिताको संवादबाट नारीहरू संसारकै रत्न हुन् र शोभा हुन् भन्ने सिद्ध हुन्छ। गलत सङ्गत, अशिक्षा एवं घर–माइतको कुसंस्कारका कारण कुनै नारीबाट भूल हुन्छ भने पनि उनलाई पिट्न हुँदैन। उनलाई त असल उपदेश दिएर सुधार्नुपर्दछ। यसबारे भनिएको छ–

न दोषो दूषयेत् स्त्रीणां मद्यानि गणयेन्न च। पञ्चनखादिसीमन्ताद् धात्रा पवित्रिता यतः ॥
पुमांसो मूर्तयो नः स्युः स्त्रियस्ते मूर्तयः प्रिये। मत्तो गरीयसी त्वार्ये ! इति श्रुतं शिवास्यतः ॥
तस्माद् नैव बुधः कुर्याद् वधूभ्यः कुत्सितं कदा। ताड्यमानां नचैवैतां शिक्षया बोधयेत् सदा ॥
(हि.ख. ४/८९/७७-७९)

(७) पितृशत्रुसँग प्रतिशोध

राजा कार्तवीर्यले जमदग्निको गोठकी कामधेनु गाई अपहरण गरे। घरमा जमदग्निका प्यारा र शक्तिशाली छोरा परशुराम थिएनन्। कार्तवीर्यले जमदग्नि र उनकी धर्मपत्नी रेणुकाको पनि हत्या गरे। राजमदले गर्दा कार्तवीर्यले साह्रै ठूलो जघन्य अपराध गरेका थिए। सम्पूर्ण घटना थाहा पाएर परशुराम घर आए। घटना सुनेर परशुराम चोटले मुर्मुरिए। चोट खाएका परशुराम पृथिवीमा तीर्थयात्रा गर्दै नेपालमा आए। प्रभावती र सरस्वतीको सङ्गममा नुहाए। मैले जबसम्म पिताका शत्रुहरूको नाश गर्ने शक्ति पाउँदिन तबसम्म म यहाँबाट एक डेग पनि चल्दिन भन्ने निश्चय गरेर महातीर्थमा स्नान गरे। रुद्रमन्त्रको जप गरे। यसरी साधना गर्दै जाँदा छमहिनामा उनकै अगाडि शिवलिङ्गको आविर्भाव भयो।

परशुराम खुसी भए, भक्तिमा तन्मय भए र नमस्कार गरे। बारम्बार शिवलिङ्गको परिक्रमा गरेर स्तुति गरे। रातभर शिवाराधना गरे। बिहानीपख उनकै सामु भैरवभीषण भगवान् महादेव प्रकट हुनुभयो। भगवान्ले भन्नुभयो– हे भक्त परशुराम ! तिम्रो तप, भक्ति र वीरतापूर्ण चरित्रबाट म प्रसन्न भएको छु। तिमीले मबाट वर माग। त्यो वचन सुनेर परशुरामले भगवान् शिवको भावपूर्ण स्तुति गर्दै भने– हे प्रभु ! कार्तवीर्यले मेरा ब्राह्मणपितालाई मारे। म त्यसै पीरले पिल्सिएको छु। मेरा मातापिताले कसैको विरोध गर्नुभएको थिएन तापनि उनीहरूले निर्दयतापूर्वक उहाँहरूको हत्या गरे। म हजुरको कृपाबाट वैरीसँग बदला लिन चाहन्छु।

जुन छोराले पिताका वैरीहरूको नाश गर्दैन त्यो छोरो नरकगामी पुरुष हो। त्यसलाई धिक्कार छ। त्यो निन्दित पापी र अधम पुरुष हो। त्यसैले कपटद्वारा भए पनि पितृवैरीलाई मार्नुपर्दछ। यदि यसो गरिन्छ भने त्यो छोरा दुनियाका दृष्टिमा पुरुषार्थी हुन्छ र सम्मानित हुन्छ। यही कुरालाई यसप्रकार बताइएको छ–

अतस्तद्दुःखदग्धोऽहं तद्विमोचय मेऽधुना। अविरोधेन वैरेण हतः पिता मम प्रभो ॥
वैरान्तं तदहं गन्तुं वाञ्छामि त्वदनुग्रहात्। वैरान्तं च पितुर्यो हि न गच्छति कदापि च ॥
स एव नारकी प्रोक्तस्तस्य धिग् जीवनं पुनः। लोकनिन्द्यो भवेदेव मलीमसैर्युतोऽनिशम् ॥
अपि कैतवमाश्रित्य हन्तव्यो पितृघातकः ॥ (हि.ख. ५।१०३।२०-२३)

त्यसपछि भगवान् शङ्करले परशुरामलाई पिताको प्रतिशोध लिने वर दिनुभयो। परशुरामले आफ्नो प्रचण्ड वीरताबाट वैरीको वंशकै विनाश गरे।

३.५ पुण्यनदी, पुण्यतीर्थ र पुण्यक्षेत्रको दिव्य सौन्दर्य

यस उपशीर्षकअन्तर्गत कोशी, गण्डकी, वराहक्षेत्र, देवघाट, गोसाईंकुण्ड, मुक्तिनाथ र पाशुपतक्षेत्रको सङ्क्षेपमा वर्णन गरिनेछ।

(क) कोशी

हिमवत्खण्डनामक पावन पौराणिक ग्रन्थमा कुशिक यद्वा विश्वामित्रको तपस्याका कारण भगवती गौरीको पसिनाबाट प्रकट भएकी र सातधाराले सुहाएकी कोशीका नामहरूको निरूपण गरिनेछ। कोशीको विस्तृत महिमा "मननीय र महनीय" प्रसङ्गका शीर्षकमा गरिने हुँदा यहाँ सङ्क्षेपमा गरिनेछ। विशेषतः यहाँ हिमवत्खण्डमा बताइएका कोशीका सातवटा धाराका तीनथरी नाम र लोकप्रचलित नामहरूको समन्वय गरिनेछ।

हिमवत्खण्डमा तीन किसिमले कोशीहरूको नाम बताइएकाले तिनको निरूपण गरिँदैछ।

पहिलो प्रकार– शुभस्रवा, पापघ्नी, भद्रावती, महाप्रभा, वरदा, दुःखघ्नी र सत्यवाहिनी।

दोस्रो प्रकार– हरित्कान्ति, पीतवाहा, ताम्रकान्ति, दुग्धकान्ति, अमृतवाहिनी, कृष्णकान्ति र व्योमधारा।

तेस्रो प्रकार– दुर्गा, नारायणी, चण्डी, शिवदूती, कपर्दिनी, वाराही, शची र गौरी।

चौथो प्रकार– इन्द्रावती, सुनकोशी, तामाकोशी, दूधकोशी, अरुणकोशी, तमोरकोशी र वरुणकोशी।

उक्त चार किसिमका नामहरूको समन्वय यसप्रकार छ–

(१) शुभस्रवा, हरित्कान्ति, दुर्गा– इन्द्रावती
(२) पापघ्नी, पीतवाहा, नारायणी– सुनकोशी
(३) भद्रावती, ताम्रकान्ति, चण्डी– तामाकोशी
(४) महाप्रभा, दुग्धकान्ति, शिवदूती– दूधकोशी
(५) वरदा, अमृतवाहिनी, कपर्दिनी– अरुणकोशी
(६) दुःखहन्त्री, कृष्णकान्ति, शची– तमोरकोशी
(७) सत्यवाहिनी, व्योमधारा, गौरी– वरुणकोशी

हिमवत्खण्डमा प्रस्तुत पद्य यसप्रकार छन्–

शुभस्रवा वा पापघ्नी भद्रावती महाप्रभा। वरदा चैव दुःखघ्नी सप्तैताः सत्यवाहिनी॥
सततं सप्त कौशिक्यो वदिष्यन्तीति जीविनः। सप्तधारा भवामोऽद्य विख्याता मद्विभूतयः॥
दुर्गा नारायणी चण्डी शिवदूती कपर्दिनी। वाराही च शची गौरी कौशिक्यः क्रमशोऽद्रिजाः॥ (हि.ख. ३/४०/६९–७१)

कुशिकले स्तुति गर्दा यी सातै धाराको यसरी महिमा बताएका छन्– मानिसहरूका मोह, अन्धकार, अविद्या नाश गर्ने, नाना जन्ममा गरिएका पापहरूको विनाश गर्ने, सृष्टि, स्थिति र संहार गर्न समर्थ ज्ञानरूपिणी जलमूर्ति कौशिकी भगवतीलाई प्रणाम गर्दछु।

मोहान्धकाराविद्यानां विनाशिन्यै च जन्मिनाम्। बहुजन्मजपापानां विनाशिन्यै नमो नमः॥
सृष्टिस्थितिविनाशेषु स्वतन्त्रायै सरिद्वरे! ज्ञानदे! ज्ञानरूपायै जलमूर्त्यै नमोऽस्तु ते॥ (हि.ख. ३/४०/३२–३३)

उक्त स्तुतिबाट नै कौशिकी नदीको समग्र शक्ति व्यक्त भएको छ।

(ख) गण्डकी

हिमालयमा गण्डक ऋषिको तपस्याबाट प्रसन्न भएकी भगवतीको पसिनाबाट सप्तगण्डकीको उत्पत्ति भएको हो। पसिनाबाट बनेका सातवटै धारासँग गण्डक ऋषिको तपोजनित सम्बन्ध भएका कारण सातै धाराको सामूहिक नाम गण्डकी रहन गएको प्रसिद्धि छ। उक्त धाराहरूले धर्मधारा, यशोधारा, विश्वधारा, सितप्रभा, रत्नधारा, सुवर्णाभा र कृष्णाभा नामबाट आफूलाई छुट्टाछुट्टै परिचित गराए। यिनै धाराहरूलाई भगवान्का शक्तिहरूसँग समन्वित गराउँदा माहेश्वरी, ब्राह्मी, नारसिंही, वैष्णवी, कौमारी, कालिका र गङ्गा भनी नामकरण गरियो। लोकमा क्रमशः यिनै धाराहरू त्रिशूली, बूढीगण्डकी, मर्स्याङ्दी, मादी, दरौँदी, सेती र कालीगण्डकी नामले प्रसिद्ध छन्। उक्त तथ्यलाई हिमवत्खण्डमा यसरी निरूपण गरिएको छ–

धर्मधारा, यशोधारा, विश्वधारा, सितप्रभा। रत्नधारा, सुवर्णाभा, कृष्णाभा, स्याच्च, सप्तकम्॥
माहेश्वरी तथा ब्राह्मी नारसिंही च वैष्णवी। कौमारी कालिका गङ्गा गण्डक्यः क्रमशो मम॥ (हि.ख. ३/४४/७७–७८)

यसरी गण्डक ऋषिको तपस्याबाट गण्डकीहरूको प्रादुर्भाव भयो। त्यस दिनदेखि आजसम्म यी सातै गण्डकी पवित्र छन् किनकि यी सबैको प्रादुर्भाव भगवती पार्वतीको शरीरको पसिनाबाट भएको हो। हिमवत्खण्डमा भनिएको छ–

तदाद्यापि गण्डक्यः सर्वाः पूताः सरिद्वराः। भवेयुः स्नाहि हे धीमन्! गौरीदेहविनिःसृताः॥ (हि.ख. ३/४४/८७)

(ग) वराहक्षेत्र

भगवान् वराहले धर्मरक्षा र अधर्मको नाशका लागि अवतार लिनुभएको दिव्यभूमि नै वराहक्षेत्र हो। विश्वामित्रको तपस्याबाट प्रसन्न भएकी पार्वतीको पसिना प्रकट भई सातवटा धारामा प्रवाहित बनेकी कोशी नदी र कौकानदीको सङ्गममा अवस्थित वराहक्षेत्र विश्वप्रसिद्ध पुण्यतीर्थ हो। यस वराहक्षेत्रको महिमा बताउँदै हिमवत्खण्डमा भनिएको छ– वराहपर्वतमा पृथिवीको उद्धारका लागि भगवान् विष्णुले बँदेलको रूप लिनुभएको हुँदा त्यसलाई वराहपर्वत भनिएको हो। सम्पूर्ण

प्राणीहरूको पाप नाश गर्ने साक्षात् उमादेवीको पसिनाबाट पैदा भएका कोशीहरू वराहपर्वतको फेदीहरूबाट बग्दछन् । कोकानामक पर्वतबाट पैदा भएकी पुण्यनदी कोका पनि त्यहीँ बहन्छिन् । सबैको मनोरथ पूरा गराउने कोशी र कोकाको सङ्गमलाई वराहक्षेत्र भनिन्छ । जो मानिसहरू कोका–कौशिकीको सङ्गममा स्नान गरी वराहपर्वतमा आरोहण गर्दछन् तिनीहरूले पाइला–पाइलामा अश्वमेधयज्ञको फल प्राप्त गर्दछन् । यस कुरालाई यसरी बताइएको छ–

तत्रैव भगवान् विष्णुः कोलरूपं दधार सः । धरण्युद्धारणार्थाय तस्माद् वराहपर्वतः ॥

कौशिकी सप्त सम्भूय चोवाह तदधोऽनिशम् । उमायाः स्वेदसम्भूता सर्वैनसां प्रणाशिनी ॥

कोकोनाममहाशैलस्तत्कन्दरसमुद्भवा । तस्मात् कोकेति विख्याता पुण्यतरा नदीवरा ॥

तयोः सुसङ्गमे तीर्थे वराहतीर्थमुत्तमम् । ईप्सितदञ्च सर्वेषामिति विद्धि घटोद्भव ॥

नरः स्नात्वा च कौशिक्यां समारोहति तं गिरिम् । अश्वमेधफलं साग्रं प्रलभेत पदे पदे ॥ (हि.ख. ३/३४/५–८, १४)

(घ) वाग्वती

हिमवत्खण्डमा वाग्वती नदीको व्यापक रूपमा महिमगायन गरिएको छ । वाग्वतीसहस्रनामबाट पनि हामी वाग्वतीको सर्वोत्तम महिमा अवगत गर्न सक्छौँ । वाग्वती हरमूर्ति हुन्, वाग्वती साक्षात् गङ्गा हुन् र वाग्वती भगवान् शिवको मुखारविन्दबाट प्रकट भएकी हुन् । यिनलाई ब्रह्मसरस्वती भारती, सावित्री, गायत्री, शङ्करजिह्वापतित ब्रह्मबिन्दुरूपा पनि भनिएको छ । कलियुगका ५ हजार वर्ष बितेपछि गङ्गाले पृथिवी परित्याग गरी वाग्वती धर्तीकी गङ्गा हुनेछिन् भनिएको छ । हिमवत्खण्डमा वाग्वतीको विस्तृत बयान गरिएको छ । यहाँ त्यसका केही पद्य उद्धृत गरिन्छन् जसअनुसार भगवान् शिवको नाभिकुण्डबाट प्रकट भएको ब्रह्मतेज उहाँको जिब्रोबाट जलरूपमा जमिनमा प्रवाहित भयो । त्यसबेला मुक्ति चाहने ब्रह्मर्षि, देवता आदिले वाग्वतीको सेवा गरे । वास्तवमा वाग्वती सबै नदीभन्दा उत्तम नदी हुन् । यी मोक्षदायिनी हुन्, यी मुमुक्षहरूकी गति र लोकलाई पवित्र तुल्याउने ब्रह्मसरस्वती हुन् ।

नाभिकुण्डसमुद्भूतं यत्तेजः शङ्करस्य तु । जिह्वाया जलरूपेण पपात हिमगह्वरे ॥

वाग्वती शिवगङ्गेति सा वै ब्रह्मसरस्वती । देवसुरर्षिभिर्नित्यं प्रसेविता मुमुक्षुभिः ॥

वाग्वती सरितां श्रेष्ठा वाग्वती मोक्षदायिनी । गतिः सैव मुमुक्षूणां वाग्वती लोकपावनी ॥ (हि.ख. ४/८८/५५–५७)

(ङ) पाशुपतक्षेत्र वा पाशुपती पुरी

कोशी र गण्डकीको बीचमा सर्वोत्तम धामका रूपमा पाशुपतक्षेत्र रहेको छ । यही धामका कारण संसारमा नेपाल पशुपतिपालित पवित्र भूमिका रूपमा विख्यात छ । महापुण्यदायक पाशुपतक्षेत्र संसारमा धन्य छ जहाँ भगवान् पशुपति विराजमान हुनुहुन्छ । चौसट्ठी ज्योतिर्लिङ्गहरूलाई वरिपरि राखेर बीचमा ज्योतिका पनि ज्योति, देवताका पनि देवता, भगवान् पशुपति महाकालीरूपा भगवती गुह्येश्वरी र सरस्वतीरूपा वाग्वतीलाई साथमा लिएर विराजमान हुनुहुन्छ । जहाँ भगवान् पशुपतिको द्वारपाल बनेर भगवान् गणेश विराजमान हुनुहुन्छ त्यो पाशुपतक्षेत्र विश्वमा धन्य छ ।

पाशुपती पुरी १४ भुवनहरूमा उत्तम छ । यसलाई उमामाहेश्वरीपुरी पनि भनिन्छ । गङ्गाको उत्तरदिशामा पशुपतिको प्यारो नगर पाशुपतक्षेत्र रहेको छ । यसलाई पशुपतिले कहिल्यै पनि छोड्नुहुन्न । त्यसैले यसलाई उत्तरकाशी भनिन्छ । अयोध्या, मथुरा, माया, काशी, काञ्ची, अवन्ती र द्वारावती नामका सातवटा पुरीभन्दा यो पाशुपती पुरी उत्तम छ । यसको नाम सत्ययुगमा सत्यवती थियो, त्रेतामा तपोवनी थियो, द्वापरमा मुक्तिसोपाना थियो र कलिमा नैपालिका पुरी रहेको छ । वास्तवमा नेपालका नरनारी धन्य छन् जसले गुह्येश्वरी र वाग्वतीका साथमा रहनुभएका भगवान् पशुपतिनाथको र उत्तरकाशीका रूपमा रहेको पाशुपती पुरीको दर्शन गर्छन् । यसलाई हिमवत्खण्डमा यसरी प्रतिपादन गरिएको छ–

न मुञ्चति क्षणं चापि शङ्करो नगरीमिमाम् । तस्मादुत्तरकाशीति चोत्तरपुण्यभूगता ॥

कृते सत्यवती ज्ञेया त्रेतायां च तपोवनी । द्वापरे मुक्तिसोपाना कलौ नैपालिका पुरी ॥ आदि ।(हि.ख. ६/१७४ का विविध पद्य)

(च) देवघाट

सबै गण्डकीहरू पार्वतीको पसिनाबाट पैदा भएकाले उत्तम छन्, पापनाशक छन्, पुण्यदायक छन्, श्राद्धका लागि उपयोगी छन् र यज्ञ, व्रत एवं उपवास गर्दा शीघ्र फलदायक छन् । तर, जहाँ उक्त सातै गण्डकीको सङ्गम हुन्छ त्यो देवघाटधाम अन्य नदीहरूभन्दा कोटि कोटि गुना फलदायक छ ।

यी सातै गण्डकी सबै तीर्थका मूर्ति हुन्, भगवान् शिव सबै देवताका स्वरूप हुनुहुन्छ। ती सबैको सङ्गम हुने हरिहरक्षेत्र देवघाटमा नित्य देवताहरूले स्नान गर्ने हुनाले यसलाई देवघाट भनिएको हो। यहाँ देवाधिदेव महादेव प्रमथगणका साथ नित्य विराजमान हुनुहुनाले यस तीर्थलाई देवतीर्थ मानिएको हो। पृथिवीमा जति फलदायक तीर्थ रहेका छन् ती तीर्थहरूभन्दा कोटि कोटि अधिक फल प्रदान गर्ने देवघाटतीर्थ महिमामय छ। यसको महिमा यसरी गाइएको छ–

सर्वासां सङ्गमे धीर ! देवघट्टे उदाहृते। सर्वतीर्थमये पूते स्नानात् कोटिगुणं फलम्॥
सर्वतीर्थमया नद्यः सर्वदेवमयो हरः। तासां सुसङ्गमे नित्यममरैः स्नायते समम्॥
देवदेवः स्वयं तत्र तिष्ठति प्रमथैः सह। देवतीर्थमिति प्रोक्तं तस्मात् सर्वफलप्रदम्॥
पृथिव्यां यानि तीर्थानि सन्ति फलप्रदानि च। कोटिकोटिगुणं तेभ्यः स्नात्वा तत्र प्रलभ्यते॥ (हि.ख. ३/४४/१०३–१०६)

(छ) नीलकण्ठह्रद (गोसाईंकुण्ड)

नेपालीहरूको प्यारो हिमाली तीर्थको नाम गोसाईंकुण्ड हो। हिमवत्खण्डका ४५–४८ अध्यायहरूमा गोसाईंकुण्डको उत्पत्तिका साथै त्यहाँका अनेक कुण्डहरूको महिमा बताई त्रिशूलधारी भगवान् नीलकण्ठको गरलपानविषयक कथा सविस्तार वर्णन गरिएको छ। उक्त अध्यायहरूमा गोसाईंकुण्डमा तीर्थयात्री भएर जाने मानिसका लागि तीर्थयात्राविधि समेत बताइएको छ। सम्पूर्ण संसारको हितका लागि समुद्रबाट निस्केको कालकूट विषपान गर्नुहुने भगवान् शिव हातमा त्रिशूल लिएर हिमालयमा आरोहण गर्नुभयो। उहाँको हातमा त्रिशूलका साथै वेतको लौरो पनि थियो। हिमालयको शिखरमा पुगेपछि उहाँले बेतको लौरोले उक्त शिखरमा घोच्दा गङ्गासमान पवित्र वेत्रावती नदी प्रकट भइन्। वेत्रावतीको तटभाग उत्तम तीर्थ भयो। भगवान् शिव त्यसभन्दा माथिको चुचुरोमा पुग्नुभयो। थकाइ, विषको ज्वाला र प्यासले व्याकुल भई त्रिशूल रोपेर भागीरथीलाई याद गर्नुभयो। भगवान् शिवले विकराल कालकूटपान गरेका कारण उहाँको घाँटी नीलो भयो र उहाँ नीलकण्ठ नामले प्रसिद्ध हुनुभयो। हिमवत्खण्डमा यसबारे भनिएको छ–

कण्ठमध्ये महानीलो यस्य तिष्ठति संयतः। नीलकण्ठ इति ख्यातः सर्वलोकेषु सन्ततम्॥ (हि.ख. ३/४५/२४)

भगवान् नीलकण्ठले शिखरमा त्रिशूलले घोप्नुभएको हुँदा त्रिशूलका टुप्पाले पर्वतमा तीनवटा प्वाल परे। ती प्वालबाट त्रिपथगामिनी गङ्गा प्रकट भइन्। गङ्गालाई त्यहीँ छाडी त्रिशूल उखेलेर भगवान् नीलकण्ठ नीलपर्वतमा जान भनी चन्दनाचल (चन्दनबाडी) बाट माथि उक्लिनुभयो।

त्रिशूलपर्वतको टकुराबाट निर्मल जल भएकी त्रिशूली गङ्गा कलकल शब्द गर्दै बग्न थालिन्। ऋषिमुनि आदिले पुण्या नदी भनी स्नान गरे। त्रिशूलीको अलौकिक महिमाको बखान गरे। भगवान् शिव चन्दनबाडी नाघेर नीलाचलको पाखामा पुग्नुभयो। त्यहाँ गएर उहाँले गौरीको पसिनाबाट बगेकी धर्मधारा नदीको स्मरण गर्नुभयो र कालकूटको पीडानाश गर्न त्यहाँ पनि आफ्नो त्रिशूल रोप्नुभयो। त्यो बेला गौरीको पसिनाका दिव्य तीनधारा धर्मपर्वतबाट झर्न लागे। नीलाचलका तीन चुलीबाट तल खसेर दहका रूपमा तीनधारा परिणत भए। नीलो र निर्मल जलले भरिएको दह देखेर भगवान् शङ्कर प्रसन्न हुनुभयो। भगवान् नीलदहमा सुत्नुभयो। दह भरिएर पानी खस्दै जाँदा त्यहाँ अनेक दह बने। त्यसरी भैरवकुण्ड, सरस्वतीकुण्ड आदि अनेक कुण्ड प्रकट भए। भगवान् शिवको सुरक्षाका लागि लौरीविनायक र क्षेत्रपाल बसे।

त्यहाँ कालान्तरमा विष्णुभैरव आदि अनेक देवता आए। भगवान् शिवले भन्नुभयो– गोसाईंकुण्डमा स्नान गर्नेहरू संसारका सौभाग्यशाली मानिस हुन्। ती निष्पाप हुन्छन् र तिनले मनोरथसिद्धि गराउँछन्। मानिसमात्र हैन त्यहाँ वरिपरिका रुख, लहराले पनि पुण्य पाउँछन्। गोसाईंकुण्ड नजिकै गौरीको पसिनाबाट पैदा भएको गौरीकुण्ड छ। ब्रह्माजीले स्नान गर्नुभएको ब्रह्मकुण्ड पनि त्यही छ। त्यहाँ रहेको सरस्वतीकुण्डमा भगवान् विष्णु शयन गर्नुभएको हुनाले त्यसलाई विष्णुकुण्ड पनि भनिन्छ।

नीलकण्ठ सरोवरको महिमा बताई साध्य छैन। यहाँ स्नान गर्नाले अभ्युदय र निःश्रेयसका सम्पूर्ण फल प्राप्त हुन्छ। सबै कठोरभन्दा कठोर पाप नाश हुन्छन्। नीलकण्ठदहमा तीन डुबुल्की लगाउँदा मानिसले फेरि जन्मनु पर्दैन।

(हि.ख. ३/४५–४८ को सारांश)

(ज) मुक्तिक्षेत्र

देवतात्मा हिमालयको मध्यवर्ती सुन्दर एवं पुण्यदायक चक्रनेमिपर्वतको फेदीमा रहेको मुक्तिनाथतीर्थमा भगवान् सार्वकालिक रूपमा निवास गर्नुहुन्छ र ब्रह्माजीले जलमा ज्वाला जगाएर आरम्भ गरेको अखण्ड यज्ञका साक्षी पनि हुनुहुन्छ। अघि कुनै समयमा ब्रह्माजीले लोककल्याण र सर्वजीवमुक्तिको प्रयोजनबाट आफू होता भई चक्रनेमि पर्वतको फेदीमा यज्ञ आरम्भ गर्नुभयो।

त्यो यज्ञ सम्पन्न भएपछि त्यस क्षेत्रको नाम मुक्तिक्षेत्रका रूपमा प्रसिद्ध भयो। त्यस यज्ञमा ब्रह्माजी होता, विष्णु जल र शिव अग्निका रूपमा हुनुहुन्थ्यो। आज पनि त्यो यज्ञ अखण्डरूपमा चलिरहेको छ किनकि जलमा ज्वाला बलिरहेका छन्। त्यस मुक्तिक्षेत्रलाई देवता, ऋषि, सिद्ध, गन्धर्व, अप्सराहरूले कहिल्यै पनि छाड्दैनन्। यस तथ्यलाई यसरी प्रस्तुत गरिएको छ–

मुक्तिहेतोः कृतो यज्ञो ब्रह्मणाऽसुभृतां परः। मुक्तिक्षेत्रमिति ख्यातं तस्माल्लोके घटोद्भव॥

प्रत्यक्षं यत्र रुद्रोऽसौ वह्निमूर्तिस्तथाऽपरः। विष्णुश्चामृतमूर्तिश्च होताजस्तत्रकिं पुनः॥

ऋषयो यन्न मुञ्चन्ति न देवाः किन्नरास्तथा। गन्धर्वर्वाप्सरसः सिद्धाः नित्यं यत्र किमुच्यते॥ (हि.ख. ३/५६/१०-१३)

मुक्तिक्षेत्र भारतवर्षको दिव्य धाम हो, शालग्रामको मुहान हो, नेपालको सौरभ हो र विश्वको गौरव हो। मुक्तिनाथदेखि माथि सदाशिवकुण्ड, नारायणकुण्ड एवं दामोदरकुण्डका अमृतमय जलसंवहन गर्दै मुक्तिक्षेत्रमा र मुक्तिक्षेत्रबाट प्रकट भएकी गण्डकीको कागवेनीमा पावन सङ्गम हुन्छ। त्यसपछि गण्डकी कालीगङ्गा बनेर बग्दछिन्। प्रयाग, कुरुक्षेत्र र नैमिषारण्यमा सयपटक स्नान गर्दा जुन पुण्य प्राप्त हुन्छ त्यसको फल एकपटक मात्र शालग्रामवाहिनी कालीगङ्गामा नुहाउँदा प्राप्त हुन्छ। यही कुरा यहाँ यसरी उल्लेख गरिएको छ–

प्रयागे शतधा स्नात्वा कुरुक्षेत्रे च नैमिषे। कृष्णाभायां सकृत् स्नात्वा फलं तुल्यं लभेत ना॥ (हि.ख. ३/५५/७६)

## ३.६ साधनासौन्दर्य

हिमवत्खण्डमा सैकडौँ साधकहरूका जीवनगाथा, अखण्ड तपस्या, त्याग र स्पृहणीय उपलब्धिको चित्रण गरिएको छ। सप्तकोशी, सप्तगण्डकी, मृगस्थली, पाशुपती पुरी एवं चौसट्ठी शिवलिङ्गको वर्णनमा सैकडौँ साधकहरूका साधना र प्राप्तिको चर्चा गरिएको छ। हिमाली चुचुराहरूको वर्णन गर्दा महान् साधक ऋषि-महर्षिहरूको उल्लेख पाइन्छ। व्रत, उपवास, दान र तपस्याको चरम चुलीमा पुगेकी भगवती गौरीको दिव्य साधनाले समग्र हिमवत्खण्ड सुवासित छ। यसैगरी कुशिकऋषि, नेमुनि, गण्डकऋषि, विरूपाक्षको दिव्य साधनाबारे यस प्रस्तावनाका अरू शीर्षकहरूमा चर्चा गरिनेछ। यहाँ ती सबै साधकहरूको पुण्य स्मरण गर्दै अरू शीर्षकहरूमा चर्चा नगरिएका केही दिव्य एवं महान् साधकहरूको साधनासौन्दर्यका झिल्का प्रस्तुत गरिँदैछ।

### (क) भगवान् श्रीकृष्णको पशुपतिसाधना

आफ्ना सुपुत्र प्रद्युम्नको नेपालसुन्दरी प्रभावतीका साथ विवाहमङ्गलमा यादवहरूलाई लिएर भगवान् श्रीकृष्ण नेपालमा आउनुभयो र प्रद्युम्न, बलरामलगायतका सबै यदुवंशीहरूलाई नेपाल घुमाएर सम्पूर्ण पुण्यतीर्थ एवं पुण्यनदीहरूको दर्शन गराउनुभयो।

नेपालमा रहेका दानवहरूको दलन गरी प्रभावतीका साथ प्रद्युम्नको विवाहमङ्गल गराई उहाँ केही दिनका लागि द्वारका जानुभयो। केही समय द्वारावतीमा बसेर भगवान् पशुपतिको सम्झना गर्दै नेपालमा चाँगुनारायणमा आई विराजमान हुनुभयो। उहाँ भुवनलीला समाप्त गरी वैकुण्ठधाममा जानुभए पनि अंशरूपमा आज पनि भगवान् पशुपतिको ध्यान, उपासना र पूजा गर्दै दोलागिरि अर्थात् चाँगुनारायणक्षेत्रमा विराजमान हुनुहुन्छ। यसको उल्लेख यसरी गरिएको छ–

ततः समागतो भूयो दोलाद्रौ केशवो मुने। स्थितश्चाद्याऽपि तत्राऽसौ पूजयन् पशुपेश्वरम्॥ (हि.ख. ६/११८/१९)

### (ख) वासुकिको अनुपम शिवसाधना

नागराज वासुकिले पहिले ठूलो तपस्या गरेका थिए। उनलाई पक्षिराज गरुडको ठूलो भय भएकाले उनी भागेर पाशुपतक्षेत्रमा आए। वाग्वतीको जलमा नुहाई मन, वचन र कर्मले भगवान् पशुपतिको आराधना गरे। पशुपतिको नामजप गर्दै उनले त्यहीँ एक हजार वर्ष बिताए। कार्तिक मासको पूर्णिमाका दिन साक्षात् पञ्चमुख पशुपतिले आफ्नो स्वरूप प्रकट गरी भन्नुभयो– हे महातपस्वी नागराज ! तिमीले अहोरात्र कायिक, वाचिक र मानसिक तप गरी मलाई प्रसन्न तुल्याएका छौ। मलाई हृदयमा धारण गरी मुखले पनि मेरा नाम जपेर आराधना गऱ्यौ। त्यसैले अबदेखि तिमी मेरो कण्ठका हार हुनेछौ। अब तिम्रो वास मेरो ढोकामा हुनेछ। तिमीले पाशुपत क्षेत्रको नित्य रक्षा गर। सर्वप्रथम मेरो ढोकामा आउने दर्शनार्थीले तिम्रो दर्शन गरेपछि मेरो दर्शन गर्नुपर्दछ। जसले तिम्रो दर्शन नगरी मेरो दर्शन गर्नेछ, त्यसको दर्शन निष्फल हुनेछ। हे नागराज ! अहिले म तिमीलाई आफ्नो भूषण बनाउँछु। मेरो कृपाले गर्दा तिमी सधैँ मेरा सर्वोत्तम अलङ्कार हुनेछौ।

यसरी वरदान दिएर पशुपतिप्रभुले नागराज वासुकिलाई दुई हातले समातेर घाँटीमा धारण गरी हृदयसम्म पुऱ्याउनुभयो। त्यस दिनदेखि पशुपतिमन्दिरमा जाँदा भक्तहरूले सर्वप्रथम वासुकिको दर्शन गरेपछि मात्र भगवान् पशुपतिको दर्शन गर्दछन्।

महान् साधक वासुकि आफ्नो दिव्य साधनाका कारण संसारमा सर्वोत्तम शिवभक्तका रूपमा विख्यात भएका छन्। यसबारे यसरी बताइएको छ–

वासुकिर्नागराजोऽसौ पुरा तप्त्वा महत्तपः। तार्क्ष्यभयादिहागत्य वाग्वत्या जीवनाप्लुतः॥
पशुपतिं समाराध्य वाक्कायमानसैरिह। सहस्राब्दं मुदा व्याप्य भक्त्या तन्नाम संस्मरन्॥
कार्तिकीपूर्णिमायाञ्च साक्षात् पशुपतिर्विभुः। व्यक्तीकृत्य तनुं तस्मै वरं दातुमुवाच हि॥
शृणु दास्ये वरं तुभ्यं नागराज ! महातपाः। यस्मादाराधितोऽहञ्च त्रिविधैस्तोषितोऽनिशम्॥
यस्मात् स्मरसि मां नित्यं हृदयस्थं च कण्ठतः। कण्ठस्य भूषणं मे त्वं भविता नागराट् सदा॥ (हि.ख. ६/१६०/४६–५०)

(ग) भक्त नन्दीको पशुपतिसमाराधना

अहिले शिवका अराधक नन्दीको चर्चा गरिँदैछ। उनको जीवनकथा र शिवाराधनाबारे चर्चा गर्नुभन्दा पहिले नन्दीबारे थोरै जानकारी लिई राखौँ। हामीहरू शिवमन्दिरहरूको द्वारमा साँढेको मूर्ति देख्छौँ। पशुपतिमन्दिरमा त विशाल आकारको पित्तलको साँढेको मूर्ति देख्छौँ। यो मूर्ति भगवान् शिवका वाहन, सेवक र भक्त नन्दीको हो। उनी कसरी शिवका प्यारा वाहन भए त्यसबारे केही तथ्यप्रकाशन गरिँदैछ।

सत्ययुगमा वैदिक ब्राह्मण परिवारमा नन्दी पैदा भएका हुन्। उनको मनमा सहज भक्तिभाव ओतप्रोत थियो। उनी महादेवलाई हृदयतः मन पराउँथे। आफ्नो जीवनमा सुरुदेखि नै विषयभोगमा नलागी प्रपञ्चबाट उन्मुक्ति पाउन उनी भगवान् शङ्करको आराधना गर्न लागे।

गर्मीका दिनमा आगो तापेर, जाडोमा पानीमा डुबेर उँभो हात गराई वायु र अग्निपान गरी उनले कठोर तपस्या गरे। पशुपतिका मन्त्रको जप गर्दै राम्रा राम्रा पुष्प, पत्र र फल जम्मा गरी उनले भगवान् पशुपतिको पूजा गरे। अखण्ड तपस्या गर्दा गर्दा उनी सुकेर काठजस्ता भए। जाडो, गर्मी केही थाहा नपाउने दुब्ला भए।

नन्दीको कठोर तपस्या देखेर भगवान् पशुपति प्रसन्न हुनुभयो र दिव्यदर्शन दिनुहुँदै भन्नुभयो– हे नन्दी ! मैले तिमीलाई दिव्य आँखा (चक्षु) प्रदान गरेको छु। यो कसैले पनि सजिलै पाउँदैन। अर्को कुरा म तिमीलाई वर दिन चाहन्छु– भन त ! के मैले तिमीलाई आठै ऐश्वर्य दिऊँ ? वा तीन लोकको स्वामित्व दिऊँ ? अथवा खर्च गरेर न सकिने धन दिऊँ ? अथवा मेरा गणहरूका गणनायकको पद दिऊँ ? वा पृथिवीको एकच्छत्र साम्राज्य दिऊँ ? लौ वर माग।

त्यसबेला दिव्य चक्षु पाएका नन्दीले हजारौँ सूर्यसरि तेजले सुहाएका, मुखमण्डलमा उदीयमान सूर्यसमान किरण व्याप्त भएका, जटाधारी, चन्द्रमाको चाँद लगाएका, तीन नयन, चार भुजा र नागका गहनाले सुहाएका, चार हातमा अक्षमाला, डमरु, त्रिशूल र अभयमुद्रा धारण गर्ने ठूलो साँढेमा सवार भएका र नागको जनै लगाएका, कोटिकोटि सूर्यमान चहकिली गौरीलाई काखमा राखेर परिहास गर्दै मुसुमुसु हाँसिरहेका भगवान् पशुपतिको दिव्य स्वरूपको दर्शन गरे। उनले भगवान् शिवका अनेक रूपलाई प्रणाम गर्दै अन्तमा ॐकारेश्वर, पशुपतिपरमेश्वर र भयहारिणी भगवती पार्वतीलाई प्रणाम गरे। अनि बिन्ती गर्दै भने– हे महेश्वर ! यस नेपालदेशका मानिसहरूको चित्त हजुरको पाठको पूजामा लागोस्। यहाँका सबै नरनारी हजुरको ध्यान र स्मरणमा तत्पर भई निरन्तर हजुरको आश्रय लिने प्यारा सेवक बनून्। मलाई यही वर चाहिएको छ, अरू कुनै कुराको चाहना छैन।

भगवान् पशुपतिले भन्नुभयो– जस्तो तिमीले भन्यौ, त्यस्तै हुनेछ। तिमीले भक्तिपूर्वक तपस्या गरी मेरो याद गर्‍यौ र गर्नै नसकिने अनौठो तप गर्‍यौ। तिम्रो तपस्याको साधनाले संसारै कम्पायमान भयो। तसर्थ म तिमीलाई शिवसेनाको सेनापतिपदमा वरण गर्छु। अबदेखि तिमी मजस्तै देववन्दनीय हुनेछौ। तिमी देवदानवपूजित र सर्वगुणसम्पन्न मेरो दोस्रो रूप हुनेछौ। देवदुर्लभ तिम्रो यो देह बूढो हुनेछैन र मर्ने पनि छैन। मैले तिमीलाई यो वरदान दिएँ। तिमी मेरा पार्षद भयौ, तिमीलाई सबैले नन्दीश्वर भन्नेछन्। अबदेखि तिमी आठै ऐश्वर्यले सम्पन्न मेरो दोस्रो शरीर भयौ। देवकार्यमा तिम्रो प्रथम गणना हुनेछ। तिमीलाई सबैले मान्नेछन्, पूजा गर्नेछन्। तिमी वरदाता हुनेछौ। तिमीसँग रीस गर्ने मेरो शत्रु हुनेछ। तिमीलाई प्रसन्न बनाउने व्यक्तिसँग म प्रसन्न हुनेछु। तिमी मेरो ढोकामा बस। तिमी रिसाउँदा म रिसाउने छु। तिमी खुसी हुँदा म पनि खुसी हुनेछ। हे नन्दी ! संसारमा तिमीभन्दा प्यारो मेरो कोही हुने छैन।

यसरी वर दिएर भगवान् शिव अन्तर्धान हुनुभयो। नन्दी चार हात, तीन नयन र तेजका पुञ्जले सुहाए। भगवान् शिवका आयुध धारण गरे र दोस्रो शङ्करका रूपमा संसारमा सम्मानित भए। यसको उल्लेख हिमवत्खण्डमा यसरी गरिएको छ–

ध्रुवं बभूव दिव्याङ्गो नन्दी गणचमूपतिः। चतुर्भजस्त्रिनयनो दिव्यदेहेन संस्थितः॥ (हि.ख. ४/७८/७०)

(घ) काशी विश्वनाथद्वारा पशुपतिको आराधना

विरूपाक्षले नेमुनिको सौजन्यबाट नेपालमण्डलका चौसट्ठी लिङ्गको दर्शन, स्पर्शन र पूजा–आराधना गरेपछि नेमुनिलाई नम्र निवेदन गरे– हे सिद्धर्षि ! चौसट्ठी लिङ्गबाहेकका नेपालमण्डलका अरू महत्त्वपूर्ण शिवलिङ्गहरूको पनि महिमा सुन्न चाहन्छु।

विरूपाक्षलाई उत्तर दिँदै नेमुनिले भने– हे विरूपाक्ष ! यस नेपालमण्डलमा तीनकरोड शिवलिङ्गहरू छन्। ती सबैको बयान गरेर सकिँदैन। म अहिले पशुपतिलिङ्गसमान महिमा भएको विश्वेश्वरलिङ्गका विषयमा बताउँछु। हे विरूपाक्ष ! यहाँ नजिकै रहेका विश्वेश्वरलिङ्गको महिमा म बताउँछु। विश्वेश्वरलिङ्गको स्पर्शमात्र गर्दा काशीमा गएर गरेका सम्पूर्ण पुण्यकर्मको फल प्राप्त हुन्छ।

पहिले कुनै समयमा नेपालभूमि र पाशुपतक्षेत्रलाई पवित्र सम्झेर नेपालको पहाडखण्डमा भगवान् काशीविश्वनाथ स्वयं आउनुभयो। संसारप्रपञ्चबाट विरक्त भई उहाँले भगवान् नेपालेश्वर पशुपतिनाथको आराधना गर्दै बाह्रवर्षसम्म कठोर तपस्या गर्नुभयो। यसरी भगवान् पशुपतिको आराधना गरी काशीविश्वनाथले सम्पूर्ण लोकलाई वर दिने विश्वेश्वरलिङ्गको स्थापना गर्नुभयो।

श्री काशीविश्वनाथले भक्तिसाथ पशुपतिको आराधना गरी आनन्दपूर्वक प्रणाम गर्नुभयो। भगवान् पशुपतिनाथले काशीविश्वनाथलाई वर प्रदान गर्नुभयो। त्यसपछि काशी विश्वनाथ पशुपतिनाथको परिक्रमा गरेर खुसी हुँदै काशीतर्फ जानुभयो। भगवान् विश्वनाथले स्थापना गर्नुभएको विश्वेश्वरलिङ्ग भुक्ति, मुक्ति दिन समर्थ छ। यस लिङ्गको स्पर्शमात्र गर्दा पनि काशीमा गरेसमान पुण्य प्राप्त हुन्छ। यस तथ्यलाई यसरी बताइएको छ–

विश्वेश्वर ! महालिङ्गमिदं विद्धि विरूपदृक्। काश्यां यत्तत्कृतं कर्म स्पर्शादस्य लभेद् ध्रुवम्॥

आगत्येशो हिमगिरिकटके पुण्यभूमिञ्च मत्वा
यावत्तेपे भृशमविरतं द्वादशाब्दं तपस्वी।
आराध्याजं पशुपतिविभुं देवदासस्य हेतोः
संस्थ्याप्येदं सकलवरदं विश्वनाथो हि लिङ्गम्॥

विश्वनाथो मुदा भक्त्या पशुपतिं ननाम च। लब्ध्वा वरं परिक्रम्य तस्मात् काशीं मुदाऽव्रजत्॥
तस्माद् विश्वेश्वरं लिङ्गं भुक्तिमुक्तिफलप्रदम्। काश्यां यत्तत् कृतं सर्वं स्पर्शादस्य लभेत ना॥

(हि.ख. ६/१६०/२४–२७)

(ङ) अखण्ड तपस्वी महर्षि लोमशको दिव्यसाधना

शास्त्रहरूमा अष्टचिरञ्जीवीका साथ वकदाल्भ्य, लोमश आदि अन्य चिरञ्जीवीहरूको ससम्मान चर्चा गरिएको पाइन्छ। यस्ता चिरञ्जीवीहरू महाप्रलयकालसम्म जीवित रहन्छन् भनिएको छ। हिमवत्खण्डमा प्रसङ्गात् महातपस्वी र चिरञ्जीवी महर्षि लोमशको पावन चर्चा गरिएको छ।

एक दिन स्वर्गमा पुण्यफल भोगेर पतन भई धर्तीमा आएपछि स्वर्ग भन्ने कुरा पनि क्षणिक रहेछ भनी विरक्त भएका बोटे जातिका वंगुरु एवं उनका तीनजना भाइलाई नारदजीले हिमालयको चुचुरोमा गई तपस्या गर्न उपदेश दिनुभयो। उहाँले सम्झाउँदै भन्नुभयो– हिमालयमा तिमीहरूको दीर्घतपस्वी महर्षि लोमशसँग भेट हुनेछ। उहाँले तिमीहरूलाई जस्तो उपदेश दिनुहुनेछ त्यही अनुसार तपस्या गर। नारदजीको उपदेशअनुसार बोटेहरू लोमश ऋषिको आश्रममा पुगे। विधिपूर्वक प्रणाम गरी महर्षि लोमशसँग प्रश्न गरे– हे महर्षि ! हामीहरू पुण्यको प्रतापले स्वर्गमा गई पुण्य सकिएपछि दैवको प्रेरणाले स्वर्गबाट पृथिवीमा जन्मिएका भए पनि विरक्तिका कारण धर्तीको भोग र स्वर्गको सुखभोग गर्ने कत्ति पनि चाहना छैन। हामी मुक्ति चाहन्छौं, केवल मुक्ति। कहाँ जाऔँ र कहाँ गएर बसौँ ?

उनीहरूको प्रश्न सुनेर महर्षि लोमशले प्रसन्न हुँदै भन्नुभयो– तिमीहरूलाई धन्यवाद ! स्वर्गसुख र पृथिवीसुखबाट पीठ फर्काएका तिमीहरू योगारूढ हौ। तिमीहरूले गङ्गा र अलकनन्दाको सङ्गम देवप्रयागमा स्नान गरी धर्मकूट रुद्राश्रम रुद्रप्रयागमा गई 'ॐ नमः शिवाय' यस मन्त्रको जप गर्दै मोक्षदाता भगवान् शङ्करको आराधना गर।

ती बोटेहरूले प्रसन्न भएर जाँदाजाँदै प्रश्न गरे– हे महर्षि ! हजुरले तपस्यामा रही कति वर्ष बिताउनुभयो ? महर्षि लोमशले मुस्कुराउँदै भन्नुभयो– धत् लाय हो ! तिमीहरू क्षणिक जीवनमा रमाउने पुरुषहरूले मेरो दीर्घतपस्याको अवधि जान्न खोज्छौ ? मेरो छातीका रौँ हेर त। मेरो छातीका दुई पाय छन्। एउटा पायेमा सबै रौँ खुइलिएका छन् र अर्को पायमा रौँ भरिभराउ छन्। सत्य, त्रेता, द्वापर र कलि गरी चार युगको एक चौकडी हुन्छ र त्यस्ता ७२ चौकडीको एक मन्वन्तर हुन्छ।

एक मन्वन्तर पूरा हुँदा मेरो छातीबाट एउटा रौं खस्छ। मेरो रौं खुइलिएको छातीको एउटै पाटे हेर। लौ भन त त्यसमा कति रौं थिए हालान् ? त्यहाँ जति रौं थिए त्यति मन्वन्तर तपस्या गर्दागर्दै बितेका छन्। अब त्यत्ति रौं छातीमा बाँकी छन्।

महर्षि लोमशका वचन सुनेर छक्क पर्दै उहाँलाई प्रणाम गरी ती बोटेहरू देवप्रयागतर्फ गए। यस इतिवृत्तबाट हाम्रो आर्यपरम्परा कति महान् रहेछ भन्ने कुरा बुझ्न सकिन्छ। लोमशको तपस्याबारे भनिएको छ–

अचिरञ्जीविनो मे यत् पश्यन्तूरस्यलोमशम्। मुद्रानुमितमाद्यन्तत् लोमभिर्विवर्जितं ध्रुवम्॥

मन्वन्तरात् तदेकैकं लोमेदं भ्रश्यते ध्रुवम्। मन्वन्तराणि यातानि ज्ञेयमित्थं हि धीवराः॥ (हि.ख. १/९/८४–८५)

३.७ समष्टिगत वस्तुसौन्दर्य

नेपालमा देवभूमि, तपोभूमि र पुण्यभूमिका रूपमा चिनाउने सैकडौं औचित्यपूर्ण सन्दर्भ यहाँ रहेका छन्। मानवका नैतिक, व्यावहारिक र आचारशास्त्रीय कर्तव्यबोध गराउने संवाद, उपदेश र कथासार पनि यसमा अङ्कित छन्। यहाँ मर्मस्पर्शी सूक्ति र सन्देश गुम्फित गरिएका छन्। त्यसैले हिमवत्खण्ड पौराणिक ग्रन्थ भए तापनि काव्यकलाद्वारा पनि सुसज्जित छ।

जम्बूद्वीपअन्तर्गत चाँदीझैं सेतो हिमशृङ्खला रहेको छ। त्यसमा पनि कामाख्यादेखि कैलाससम्मको मध्यमहिमालयका तीर्थ, पुण्यनदी, कुण्ड, पुरी, शिवलिङ्ग एवं देवमूर्तिको वर्णनको क्रममा कामाख्या, सुन्दरशैल, सुन्दरतीर्थ, वराहक्षेत्र, कोशीक्षेत्र, गण्डकीक्षेत्र, देवघाट, गोसाईंकुण्ड, मुक्तिनाथ, शालग्राम बद्रीनाथ आदि हिमवत्खण्डका विशिष्ट वस्तुहरूको वर्णन गरिएकाले ग्रन्थलाई नै हिमवत्खण्ड भनी नामकरण गरिएको छ।

यस हिमवत्खण्डमा नीलकण्ठपर्वत, कामाचल कामाख्या, सुन्दरशैल, सुन्दरी भगवती, सुन्दरतीर्थ, वराहपर्वत, सप्तकोशी, सप्तगण्डकी, चौसट्ठी शिवलिङ्ग, पाशुपतक्षेत्र आदि विषयको वर्णनक्रममा सर्वाधिक वर्णन नेपालमण्डलको भएको छ। समग्र हिमवत्खण्डमा शिवशक्तिको सामरस्य–निरूपण प्रमुख प्रतिपाद्य विषय बनेर रहेको छ।

अर्कोतर्फ पवित्र नदीको स्रोत नेपाली हिमशिखरलाई दुर्लभ जडीबूटीको मूलस्रोत, ऋषिमुनिहरूको तपोभूमि, वृक्षवनस्पतिको मनोरम उद्गमभूमि तथा आदिवासी जनजातिहरूको आश्रयभूमिका रूपमा हिमवत्खण्डले चित्रण गरेको छ। वास्तुकला, स्थापत्यकला, धातुकला, मूर्तिकला, चित्रकलाजस्ता कला र शिल्पका बारेमा हिमवत्खण्डमा वर्णन गरिएको छ। यसबाट नेपाली भूगोल प्राचीन कालदेखि नै कलासाधनाको केन्द्र रहेको स्पष्ट हुन्छ। प्राचीन कालदेखि वर्णाश्रमवती प्रजाका साथै विभिन्न जनजातिको नेपालमा सह–अवस्थिति रहेको तथ्यलाई यस ग्रन्थले प्रमाणित गरेको छ।

हिमवत्खण्डमा नेपालका वराहक्षेत्र, पाशुपतक्षेत्र, हरिहरक्षेत्र एवं मुक्तिक्षेत्रको वर्णनका साथै हाल नेपालसँग सटेका र कुनै समयमा नेपालकै भू–भागभित्र रहेका र वर्तमानमा धर्तीका विभिन्न स्थानमा रहेका कामाख्या, कैलास, मानसरोवर, बदरीनाथ, कनखल हरिद्वार, देवप्रयाग, रुद्रप्रयाग, ब्रह्मप्रयाग एवं त्रियुगी नारायणजस्ता नेपालीहरूका आस्थाका केन्द्रबिन्दु तीर्थहरूको निरूपण गरिएको छ। यस ग्रन्थमा जति पनि हिमाली तीर्थ, नदीतीरका तीर्थ, कुण्डतीर्थ एवं विशाल नेपालउपत्यकामा रहेका तीर्थहरूको र शिवजीका चौसट्ठी लिङ्गलगायत अनेकौं लिङ्गहरूको महिमा बताउने सन्दर्भमा प्रत्येक तीर्थसँग गाँसिएका पुराणवर्णित कथा र लोककथाको चित्रण गरिएको छ। यसमा कथानिरूपण गर्ने क्रममा पशुपक्षीका कथा पनि बताउँदै तिनीहरूको मानवयोनिप्राप्ति र शिवलोकयात्रा समेतलाई चमत्कारपूर्ण शैलीमा प्रस्तुत गरिएको छ। भगवती पार्वतीको मास, तिथि, वार आदि कालखण्डमा आधारित उपवास र आराधनाको विस्तृत वर्णनका क्रममा अनेकौं तपस्वीहरूका कठोर तपस्या र विशिष्ट उपलब्धिका गाथा यहाँ उल्लेख गरिएका छन्। भगवती गौरीको तपस्या, उपवास र आराधनाका क्रममा नारीजातिले जिउनुपर्ने आस्थामय र उपवासमय जीवनशैलीको दिग्दर्शन गराउँदै मर्यादाको मार्गदर्शन गरिएको छ।

हिमवत्खण्डमा विभिन्न प्रसङ्गमा चर्चित ऋषि, मुनि, तपस्वी, संन्यासी आदिको तपस्या, ज्ञानप्राप्ति एवं वरदान प्राप्तिका घटनाहरूको वर्णनको प्रसङ्गमा कुशिक, मरीचि, अत्रि, पुलस्त्य, क्रतु, भृगु, अङ्गिरा, सनक, सनातन, सनन्दन, सनत्कुमार, कपिल, कश्यप, मनु, धौम्य, शक्ति, पराशर, वसिष्ठ, द्वितय, त्रितय, गालव, च्यवन, दुर्वासा, मार्कण्डेय, भारद्वाज आदि ऋषि–महर्षिहरूको हिमवत्खण्ड नेपालका विभिन्न तीर्थ, नदीतीर, पर्वत र गुफामा तपोलीन उपस्थिति देखाएर नेपाली वैदिक सनातन धर्मअन्तर्गत सबै सम्प्रदायका नरनारीहरू नेपालकै हुन् र कतैबाट यहाँ आएका होइनन् भन्ने तथ्य प्रमाणित गरिएको छ। यस ग्रन्थमा नेपालका विविध क्षेत्रको आराधना–रमणीय, उपवास–विशिष्ट र तपोदीप्त वातावरणको चित्रण गरिएबाट नेपालराष्ट्र अनादिकालदेखि नै देवभूमि, तपोभूमि र पुण्यभूमिका रूपमा प्रसिद्ध रहेको तथ्य पनि प्रमाणित हुन्छ।

हिमवत्खण्डमा नेपालमण्डलको जनजीवन र सामाजिक स्थितिको चित्रण गरिएको पाइन्छ। काशीबाट नेपाल आएका ब्राह्मणले आभीरकन्यासँग विवाह गरी घरजम गरेको वर्णन र लिच्छविराजा धर्मदेवको वैशाली छाडी नेपालप्रवेशको प्रसङ्गमा काठमाडौँ उपत्यकाको सरल, सादगीपूर्ण र सत्यनिष्ठामय जीवनशैलीको वर्णन गरिएको छ। यसमा रुद्राक्षका भेद एवं महिमा, शालग्रामशिलाको महिमा र शालग्रामका विभिन्न स्वरूपको वर्णन, श्रीकृष्ण र प्रद्युम्नको नेपालयात्राको निरूपण, मत्स्य, कूर्म, वराह, नरसिंह, वामन, परशुराम, राम, कृष्ण, बुद्ध र कल्कि, यी दश अवतारको सङ्क्षिप्त चर्चा, भगवती उमाका साथै देवीका विभिन्न स्वरूपको उल्लेख, बुद्धावतार लिएर भगवान् विष्णुले गर्नुभएको शान्तिस्थापनाको विशिष्ट घटना, भगवान् पशुपतिको आविर्भाव, पशुपतिको मृगस्थलीमा मृगलीलाजस्ता महनीय विषय वर्णित छन्।

हामी नेपाली विश्वोतुङ्ग हिमालय सगरमाथाको काखमा रमाएर जीवनयापन गर्दछौँ, शान्तिप्रेमी छौँ, यस हिमवत्खण्डमा नेपालीहरूको शान्तिप्रियता, सज्जनता, वीरता र निर्मल जीवनस्पन्दनको पटक–पटक विभिन्न माध्यमबाट वर्णन गरिएको छ। यहाँ हाम्रो इतिहास, भूगोल, धर्म, संस्कृति, जीवनशैली, आराधना, उपासना, पूजा–अर्चनाका साथै विभिन्न दर्शनहरूको उल्लेख गरिएको पाइन्छ।

हिमवत्खण्डका विभिन्न अध्यायहरूमा प्रायः पाशुपत, शैव र शाक्त दर्शनका चिन्तनहरू पाइन्छन्। हिमवत्खण्डका प्रतिपाद्य देवता, शक्ति र शिव भएकाले उक्त दर्शनहरूको चर्चा हुनु स्वाभाविक हो। मुक्तिनाथ, कालीगण्डकी र शालग्रामशिलाको वर्णनका प्रसङ्गमा वैष्णव धर्म र वैष्णव दर्शनलाई पुरस्कृत गरिएको छ। ठाउँठाउँमा अद्वैत वेदान्त र सांख्यदर्शनका चिन्तन पाइन्छन्। यहाँ सनातन संस्कार र संस्कृतिका अनेक बिम्ब छन्।

चार वेद, चार उपवेद, शिक्षा, कल्प, व्याकरण, निरुक्त, ज्योतिष र छन्द गरी छवटा वेदाङ्ग, चार्वाक, मीमांसा, न्याय, वेदान्त, सांख्य र योगजस्ता छवटा दर्शन, इतिहासपुराण, धर्मशास्त्र, तन्त्रशास्त्र, कामशास्त्र, शिल्पशास्त्र, भक्तिशास्त्र, काव्य आदि सनातन संस्कृतिका प्रमुख आधारहरूको हिमवत्खण्डमा गम्भीर प्रभाव परेको छ। हिमवत्खण्ड लिङ्ग, मूर्ति, तीर्थ, क्षेत्रजस्ता संस्कृतिका आधारभूत तत्त्वहरूको वर्णनमा केन्द्रित भएकाले यसलाई सांस्कृतिक कोष पनि भन्न सकिन्छ।

वर्णाश्रमव्यवस्था, पुनर्जन्मवाद, अवतारवादजस्ता सनातन संस्कृतिका मौलिक विषयद्वारा हिमवत्खण्डनामक अनुप्राणित छ। यसमा भगवती पार्वतीको धर्मनिष्ठा, पातिव्रत्य, उपवास, पूजा, दानजस्ता महनीय विषयको यसमा गम्भीर वर्णन गरिएको छ। यसमा संस्कारका अनेक प्रतिबिम्ब पाइन्छन्। गृहस्थधर्म र संन्यासधर्मको अन्य पुराणहरूमा झैँ यहाँ पनि उपदेश गरिएको छ। त्यसैले हिमवत्खण्डलाई भाषा, साहित्य, धर्म, दर्शन, कला र इतिहासको कुञ्जका रूपमा रहेको हामी पाउँछौँ।

विद्यालाई मात्र साध्य मान्ने तार्किक विद्वान्हरूले हिमवत्खण्डबाट धर्मको आवरणले ढाकिएका पर्वत, हिमचुली, नदी, कुण्ड, नगरी, मूर्ति, लिङ्गजस्ता विषयलाई आफ्नै अनुसन्धानात्मक चिन्तनबाट आवरणमुक्त गराएर अध्ययन गर्नुपर्छ। त्यसबाट तत्कालीन नेपालको इतिहास, भूगोल, मूर्तिकला, वास्तुकला, समाज र संस्कृतिको पूर्वाग्रह मुक्त भई यथार्थ परिज्ञान गर्न सकिनेछ। धर्मलाई सर्वोपरि मान्ने संस्कारका अनुसन्धाताका लागि भने दुबै हातमा लड्डु हुनेछ।

त्यसैले योगीजीले आफ्नो सम्पादकीयमा भन्नुभएको छ– "यो हिमवत्खण्ड १८ महापुराणमध्ये विशाल स्कन्दपुराणको मेरुखण्डअन्तर्गतको एउटा खण्ड हो। यसमा विश्वोत्तुङ्ग, विश्वकौतूहलवर्धक, विश्वानुशीलनविषय र विश्वविख्यात हिमालयको पौराणिक इतिहास एवं भूगोल छ, तीर्थयात्रीका निमित्त तीर्थमाहात्म्य छ, पौराणिकका निमित्त पुराण छ, भौगोलिकका निमित्त भूगोलशास्त्र छ, ऐतिहासिकका निमित्त इतिहास छ र जनसाधारण जिज्ञासुका निमित्त यसका परिचायक अनन्त सामग्री रहेका छन्।"

निष्कर्षमा भन्नुपर्दा यसमा महापुराणहरूका रचयिता भगवान् वेदव्यासको ऋतम्भरा प्रज्ञाद्वारा आलोकित वागीश्वरीको दिव्यसंसार छ। नेपाल राष्ट्रको प्राकृतिक सुषमा, आध्यात्मिक सुन्दरता र चारित्रिक दिव्यता व्यक्त गर्ने यो हिमवत्खण्ड सबैलासफैँ महनीय छ।

ॐ

## चतुर्थ परिच्छेद

# हिमवत्खण्डका केही मननीय एवं महनीय प्रसङ्ग

### ४.१ महिमालय हिमालय

ब्रह्माजीले पर्वतहरूको सृष्टि गर्ने क्रममा सुमेरुको सृष्टिपछि महादेवको ध्यान गरी पर्वतराज हिमालयको सृष्टि गर्नुभएको हो। हजारौं शिखरले सम्पन्न हिमालय विचित्र सुन्दर विश्वोत्तुङ्ग र सर्वसमृद्धिमान्, हिमाच्छादित भई शोभाधाम र महिमालय बनेर रहेको छ। ब्रह्माजीद्वारा रचित हिमधर्मले सिँगारिएको हिमालय पुण्यभूमि र सबै पर्वतहरूमा सुन्दर एवं रमणीय छ। यसका चुचुराहरू चाँदीझैं टल्किरहन्छन्। हजारौं पवित्र तीर्थका कारण लोकपूजित र लोकपावन हिमालयमा भगवान् शिव विराजमान हुनुहुन्छ। रजताकार हजारौं हिमशिखर, चुचुराहरूबाट पैदा भएका झरना, स्वर्णशिखर, वैदूर्यशिखर, मणिशिखर, नीलमणिशिखर, पुष्पराजशिखर, स्फटिकशिखर, हीरकशिखर, चन्द्रकान्तशिखर, सूर्यकान्तशिखर र धातुशिखरले शोभायमान हिमालयका भूमि र भवन रत्नमय छन्। त्यतिमात्र होइन, सम्पूर्ण लता, वृक्षसहित वन्यप्रदेश पनि सर्वधातुमय छन्।

यसैगरी हिमालयक्षेत्र सरोवरहरू धातुमय कमलरङ्गी, विरङ्गी पुष्पराशिले सुषमाको राजधानी बनेर सुहाएको छ। तलाउ, गुफा, भीर र ठूलाठूला पाषाणले महिमालय हिमालय सुहाएको छ। भृगुपत्तन, नदी, त्रिशृङ्गशिखर, विष्णुधाममहाकूट, कूर्माचलशिखर, रौप्यशिखर, बद्रीशिखर, अग्निशृङ्ग, एकशृङ्ग, उमाशृङ्ग आदि चुचुराहरूले सुशोभित हिमालयमा भगवान् धर्म आई हिमका रूपमा रहेर क्रमशः पग्लिदै गए। यसरी धर्मको सार्वकालिक सत्ता हुनाले हिमालयमा अधर्मले कहिल्यै पनि प्रवेश पाएन। गगनचुम्बी धर्मकूट, सिद्धाश्रम, गण्डाद्रि आदि पर्वत र मुक्तिशिखर, पाण्डुशिखर, श्यामशिखर, वृत्ताहार्य, त्रिशूलाद्रि, मुञ्जवान् पर्वतशिखरले चटक्क सिँगारिएको हिमालय बुद्धाश्रमपर्वत, विष्णुपर्वत, गौरीपर्वत, कुशपर्वत, कामाद्रि, नीलाद्रि आदि पर्वतका शिखरहरूका साथ अग्निशिखर, भस्माद्रि, सुन्दराद्रि समेतको शोभाले महिमालय बनी विश्वको माझमा सुहाएको छ। त्यसैले संसारले हिमालयलाई नगाधिराज भनी सम्बोधन गर्दछ। सृष्टिक्रममा सुमेरुको दक्षिणभागमा चाँदीझैं टल्किने हिमालयलाई देखेर आनन्दित बन्नुभएका भगवान् विष्णु पछि आफ्ना गणका साथ बदरिकाश्रमको शिखरमा विराजमान हुनुभयो। यस प्रसङ्गलाई यसरी उल्लेख गरिएको छ–

पूर्वतो दक्षिणे शृङ्गे प्रेक्ष्याच्युतो हिमालयम्। हर्षं न्यवीविशद् विष्णुर्बद्रिकाद्रिं गणैः सह॥ (हि.ख. १/३/३२)

असंख्य योजन फैलिएको र असंख्य योजन अग्लो पूर्वसमुद्रदेखि पश्चिमसमुद्रसम्म फैलिएको आफूभन्दा तल हजारौं पर्वतशिखरले सुहाएको हिमालय मेरुसमान महिमशाली छ र सर्वत्र चाँदीझैं टल्किने हिमानीले गर्दा साह्रै रमणीय छ। हिमालयबाट जति नदीहरू प्रकट हुन्छन् ती सबैले साधक भक्तहरूले मनले चिताएको कुरा पुर्‍याउँछन्। ती नदीमा र नदीका तीरमा बनेका तीर्थहरूमा स्नान, दान गर्ने मानिसका सबै पाप पखालिन्छन्। भनिएको छ–

यावत्यः प्रोद्भवाः नद्यः तावत्यः कामदाः किल। पावन्यः सर्वलोकानां विमोचयन्ति किल्विषाद्॥

(हि.ख. १/३/३५–३६)

ब्रह्मपुत्रको प्रवाह, हैमवतीगङ्गा, भद्रा, अलकनन्दा, रेवा, शतरुद्रा, कौशिकी एवं गण्डकीहरू र वाग्वतीजस्ता नदीको पिताका रूपमा लोककल्याण गर्दै हिमालय विराजमान छ। (हिमवत्खण्ड, प्रकरण– १, अध्याय– ३)

### ४.२ सदाचारमहिमा

हिमवत्खण्डको प्रथम प्रकरणको दशम अध्यायमा सदाचारको विषयमा वर्णन गरिएको छ। कुमारजीले अगस्त्यजीलाई बताउनुभएको सदाचारप्रसङ्ग यहाँ जस्ताको तस्तै प्रस्तुत गरिँदैछ–

प्रत्येक कल्याणाकांक्षी साधकले प्रातः ब्राह्ममुहूर्तमा जागेर ईश्वरको स्मरण र पृथिवीलाई प्रणाम गरी–

समुद्रवसने देवि ! पर्वतस्तनमण्डिते। विष्णुपत्नि ! नमस्तुभ्यं पादस्पर्शं क्षमस्व मे॥

यस मन्त्रको उच्चारण गरेर पृथिवीको स्तुति गरेपछि दायाँ नाकबाट सास चलेको भए दायाँ पाउ, बायाँ नाकबाट सास चलेको भए बायाँ पाउले पृथिवीमा टेक्नु पर्दछ। त्यसपछि बाहिर गएर नैर्ऋत्य दिशामा मलत्याग गर्नुपर्दछ। दिसा–पिसाब गर्दा जनै कानमा बेर्नुपर्दछ, मौनता अवलम्बन गरी प्रातः र सायं समयमा उत्तर फर्कनुपर्दछ भने रातमा दक्षिण फर्कनुपर्दछ।

जलाशयबाट छुट्टै पात्रमा जल फिकेर प्रयोग गरी शौचकर्म सम्पन्न गर्नुपर्दछ। जननेन्द्रियमा एकपटक, गुदद्वारमा तीन पटक, बायाँ हातमा दशपटक र फेरि दुबै हातमा सातसात पटक मौन भई माटो लगाएर शौचकर्म सम्पन्न गर्नुपर्दछ। यसैगरी दुबै पाउमा पनि तीनतीन पटक माटो लगाई शौच गर्नुपर्दछ। त्यसपछि बारम्बार आचमन गर्नुपर्दछ। शौचकर्म गरेपछि सूर्य, गाई र ब्राह्मणको दर्शन गर्दा कर्मनिष्ठ व्यक्ति शुद्ध बन्दछ।

दुबै हातमुख धोएर दुधालु जातको काँडादार १२ अङ्गुल परिमाणको शुद्ध काठद्वारा दन्तमञ्जन गर्नुपर्दछ। त्यस अवसरमा यो मन्त्र पढ्नुपर्दछ–

आर्युबलं यशो वर्चः प्रजाः पशुवसूनि च। ब्रह्म प्रज्ञां च मेधां च त्वन्नो देहि वनस्पते॥ (हि.ख. १/१०/१५)

त्यसपछि हात, मुख, पाउ, धोई बारम्बार कुल्ला गर्नुपर्दछ। पिठ्यूँ सोझ्याएर पूर्व वा उत्तर फर्की बसेर ब्राह्मतीर्थले आचमन गर्नुपर्दछ। दायाँ हातको बूढीऔँला र साहिलीऔँलाका टुप्पा जोडेर "ॐ वाङ्म आस्येऽस्तु" यो मन्त्र पढ्दै मुखमा स्पर्श गर्नुपर्दछ। "ॐ नसोर्मे प्राणोऽस्तु" यो मन्त्र पढेर नाकमा स्पर्श गर्नुपर्दछ। "ॐ अक्ष्णोर्मे चक्षुरस्तु" यो मन्त्र पढेर आँखामा स्पर्श गर्नुपर्दछ। "ॐ कर्णयोर्मे श्रोत्रमस्तु" यो मन्त्र पढेर कानमा स्पर्श गर्नुपर्दछ। "ॐ बाह्वोर्मे बलमस्तु" यो मन्त्र पढेर बाहुमा स्पर्श गर्नुपर्दछ। "ॐ ऊर्वोर्मे ओजोऽस्तु" यस मन्त्रले तिघ्रामा स्पर्श गर्नुपर्दछ। "ॐ अरिष्टानि मे अङ्गानि सन्तु ॐ तनुस्तन्वा मे सहास्तु" यस मन्त्रले शरीरका सबै अङ्गमा स्पर्श गर्नुपर्दछ। त्यसपछि तीर्थ अर्थात् नदी, तलाउ, कुवा वा धारामा गई विधिपूर्वक स्नान गर्नुपर्दछ। आचमन, प्राणायाम मन्त्रपूर्वक शिखाबन्धन गरी तीर्थको आवाहन गरेर सङ्कल्पपूर्वक कुश हातमा लिई गङ्गाजीलाई सम्झँदै स्नान गरेर सूर्यलाई अर्घ्य दिनुपर्दछ। त्यसपछि–

मृत्तिके हर मे पापं यन्मया दुष्कृतं कृतम्। त्वया हतेन पापेन सर्वपापैः प्रमुच्यते॥ (हि.ख. १/१०/२७)

यो मन्त्र उच्चारण गरी शरीरमा माटो दल्नुपर्दछ। यसरी माटो दलेपछि मनले मन्त्र चिताउँदै ॐकार मन्त्रले तीर्थजललाई हुँडलेर तीन पटक डुबुल्की लगाई पूर्वतर्फ फर्किएर द्रुपदा मन्त्रले मार्जन गर्नुपर्दछ। आजुलीमा जल लिएर ॐ आपोहिष्ठा ... इत्यादि मन्त्रले तीन, पाँच वा सात पटक शिरमा अभिषेक गर्नुपर्दछ। तीन पटक प्राणायाम गरी दशपटक गायत्रीजप गर्नुपर्दछ। यसरी स्नान गरेपछि बाहिर आएर धोती, उत्तरीय आदि पहिरेर स्नानाङ्गतर्पण गर्नुपर्दछ।

स्नानाङ्गतर्पणका क्रममा आफ्नो इच्छानुसार जलमा अथवा जमिनमा देवता र पितृहरूको तर्पण गर्नुपर्दछ। सम्पूर्ण देवता र पितृहरू जलरूपमा रहने हुनाले जलमा दिइएको तर्पण अविनाशी हुन्छ। भनिएको छ–

अम्भस्थो वा स्थलस्थो वा तर्पयेत् पितृदेवताः। तर्पयेत्तु यथाकाममप्सु सर्वं प्रतिष्ठितम्॥

आपो देवगणाः सर्वे आपः पितृगणाः स्मृता। तस्माज्जले जलं देयं पितृभ्यो दत्तमक्षयम्॥ (हि.ख. १/१०/३६–३७)

देवता र पितृलाई जलमा अञ्जलि दिनुपर्दछ भने व्रतबन्ध र विवाहसंस्कार नहुँदै मरेका आफन्तका निमित्त जमिनमा तर्पण गर्नुपर्दछ।

समावर्तन संस्कार सम्पन्न गरेका द्विजले प्रतिदिन देवता, ऋषि र पितृहरूका निमित्त तर्पण दिनुपर्दछ। देवता, पितृ र ऋषि नित्य तर्पण चाहन्छन्। तर्पण नपाएमा निराश भएर फर्किन्छन्। त्यसैले प्रतिदिन तर्पण गर्नुपर्दछ। तर्पण गर्नाले सिद्धि प्राप्त हुन्छ भने तर्पण नगर्नाले प्रत्यवाय लाग्छ।

सबैको उदय, शान्ति र कल्याण चाहने साधकले स्नानाङ्गतर्पण गरेपछि पवित्र ठाउँमा गएर पूर्व वा उत्तर फर्की ब्राह्मतीर्थले तीन पटक प्राणायाम गरेर मौन अँगाली सन्ध्यावन्दन गर्नुपर्दछ। यो सन्ध्यावन्दन घरमा, नदीतटमा गाईको गोठमा, अग्निशालामा, सिद्धक्षेत्रमा, तीर्थमा, देवताको समीपमा, शिवजीको समीपमा, अग्ला पहाडको डाँडामा, अशोकवृक्षको फेदमा, हिमालयको टापुमा, हिमका काँडा उम्रेका टापुमा, हिमालयको उपत्यकामा र हिमालयको मध्यवर्ती हिमराशिमा उत्तरोत्तर फलदायक हुन्छ।

सबै कार्यको सिद्धिका लागि बाघको छालाको आसन, ज्ञानसिद्धिका लागि मृगको छालाको आसन, रोग निवारणका लागि वस्त्रको आसन, लक्ष्मीवृद्धिका लागि वेतको आसन, पुष्टिका लागि रेशमको आसन र दुःखनिवृत्तिका लागि कम्बलको आसन उपयुक्त मानिएको छ। भनिएको छ–

आसनं च ततो धीमान् प्रकल्पयेद् विधानतः। सर्वसिद्ध्यै व्याघ्रचर्म ज्ञानसिद्ध्यै मृगाजिनम्॥

वस्त्रं रोगहरं विद्धि वेत्रजं श्रीप्रवर्धनम्। कौशेयं पौष्टिकं विद्धि काम्बलं दुःखमोचनम्॥ (हि.ख. १/१०/५०–५१)

उक्त आसनहरूमध्ये कुनै एकमा बसेर शरीर सीधा गराई स्वस्तिकासन वा पद्मासन बाँधेर आँखा चिम्ली ऋषिहरूको स्मरण गर्दै पूरक, कुम्भक र रेचक प्राणायाम गर्नुपर्दछ। पूरक गर्दा नाभिमा श्यामवर्ण, कुम्भक गर्दा हृदयमा लालवर्ण र रेचक गर्दा निधारमा सेतो वर्णको ध्यान गर्नुपर्दछ। सन्ध्याविधिमा बताइएका मन्त्रहरूको प्रयोग गरी निधार, शिर, काँध, आँखा र

हात, यी छवटा अङ्गमा न्यास गर्नुपर्दछ। मनले ॐ आपोहिष्ठा... मन्त्र स्मरण गर्दै फूल मिसिएको अर्घ्य सूर्यलाई अर्पण गर्नुपर्दछ। त्यसपछि चञ्चलताहीन भई ध्यानमुद्रा औंगालेर शास्त्रविधिअनुसार निर्मित निश्चित दाना भएको माला हातमा लिएर मन्त्रजप गर्नुपर्दछ। रुद्राक्ष र स्फटिकका माला सर्वसिद्धिप्रदायक हुन्छन्, मोतीको मालाले सौभाग्य र लक्ष्मी प्राप्त गराउँछ। पद्मरागमणिको मालाले मन्त्रलाई प्रत्यक्ष तुल्याउँछ र सुन-चाँदीको माला सर्वसिद्धिप्रदायक हुन्छ। भनिएको छ-

रुद्राक्षैर्निर्मिता माला सर्वकामप्रसाधनी। स्फटिकैर्निर्मिता माला सर्वसिद्धिप्रदायिनी॥
मौक्तिकैः सम्भवा माला सौभाग्यश्रीप्रसाधनी। मन्त्रप्रत्यक्षदा माला पद्मरागोद्भवा तथा॥
सौवर्णी राजती माला सर्वकामान् प्रयच्छति। (हि.ख. १/१०/६०-६२)

उक्त मालामध्ये कुनै एकबाट जापकले निश्चित जप गरेपछि अर्घ्य दिनुपर्दछ र सबै कार्यको सिद्धिका लागि स्तोत्रपाठ गर्नुपर्दछ। यो उत्तम गृहस्थ धर्म हो। (हिमवतखण्ड, प्रकरण- १, अध्याय- १०)

### ४.३ भस्ममहिमा

कुनै कल्पमा भगवान् रुद्रको आँखाबाट अग्नि प्रकट हुँदा त्रिलोकी नै भस्म भयो। यसरी त्रिलोकी नै भस्म हुँदा जुन खरानी देखियो त्यसलाई नै भस्म भनिन्छ। भगवान् शिवले जलस्नान छाडेर त्यसलाई विभूति भनी आफ्ना अङ्गमा लेपन गर्नुभयो। भगवान् रुद्रको आँखाबाट पैदा भएको भस्मले नुहाएर देवता, ऋषि, योगी र सिद्धहरू परमानन्द प्राप्त गर्दछन्। वास्तवमा भस्मस्नान भन्दा ठूलो स्नान कुनै हुँदैन, भस्मस्नानभन्दा ठूलो मोक्ष कुनै हुँदैन। भस्मासनभन्दा ठूलो स्थिरतत्त्व कुनै हुँदैन र भस्मार्चनभन्दा ठूलो कुनै अर्चना पनि हुँदैन। भनिएको छ-

न भस्मनः परं स्नानं मोक्षं च भस्मनः परम्। नास्ति भस्मासनात् स्थैर्यं नास्ति भस्मार्चनात् परम्॥ (हि.ख. १/११/२५)

वास्तवमा भस्मस्नान गर्ने साधक शिवस्वरूप हुने हुनाले तिनलाई ब्रह्महत्या, पाँच महापाप र अरू कुनै पनि पाप लाग्दैनन्। अभक्ष्यभक्षण, अगम्यगमन, असत्यभाषण, परनिन्दा, असत्य आत्मप्रचार, मर्मोद्‌घाटन इत्यादि कर्मबाट लागेका पापहरू भस्मधारण गर्नाले निर्मूल हुन्छन्।

भस्मस्नानले पवित्र भएको साधकले जलस्नान गर्नु पर्दैन। जलस्नानबाट एउटै तीर्थमा स्नान गरेको फल प्राप्त हुन्छ भने भस्मस्नान गर्ने साधकले सबै तीर्थमा स्नान गरेको पुण्य पाउँछ। भस्मस्नान गर्ने र रुद्राक्षधारण गर्ने मानिस भगवान् रुद्रकै स्वरूप हुन्छ। भस्मस्नान गर्ने, रुद्राक्षधारण गर्ने र रुद्राध्याय पाठ गर्ने मानिसले कहिल्यै पनि यमपुर देख्नुपर्दैन। सबै किसिमका दानहरूबाट पाइने फल र सबै किसिमका धर्मको आचरणको फल निधारमा त्रिपुण्ड्रधारण गरी भगवान् शिवको ध्यान गर्दा प्राप्त हुन्छ। (हिमवतखण्ड, प्रकरण- १, अध्याय- ११)

### ४.४ रुद्राक्षको महिमा (एकमुखेदेखि चौधमुखेसम्मको रुद्राक्षधारण)

भगवान् शिवले भन्नुभएको छ- रुद्राक्ष मेरै मूर्ति हुन्, तिनले धर्म, अर्थ, काम र मोक्षरूप फल प्रदान गर्दछन्। सम्पूर्ण वृक्षहरूमा उत्तम रुद्राक्षको वृक्ष हुन्छ। लोकको उद्धारका लागि भगवान् शिवबाट रुद्राक्षको उत्पत्ति भएको हो। यो जगत् पनि रुद्राक्षमय छ। देवता, ऋषि-मुनि र सिद्धहरू रुद्राक्ष धारण गर्नाले रुद्रमय बन्दछन्। तिनीहरूले जे चिताउँछन् त्यो पाउँछन्। वास्तवमा रुद्राक्षलाई मनोरथपूरक, दुःखदरिद्रतानाशक, पापनाशक र मोक्षदायक मानिएको छ।

बुद्धिमान् मानिसले शिरमा रुद्राक्षधारण गर्दा कोटिगुना फल पाउँछ। कानमा धारण गर्दा १० कोटि फल पाउँछ भने कण्ठमा धारण गर्दा सहस्रकोटि फल पाउँछ। शिखा र बाहुमूलमा धारण गर्नाले अनन्त फल पाउँछ। यसैगरी वक्षःस्थल र शरीरमा धारण गर्दा पनि लाखौं गुना अधिक फल पाउँछ। जप, ध्यान आदि कर्म गर्न नसके पनि ब्राह्मणले अवश्य रुद्राक्ष धारण गर्नुपर्दछ। यसो गर्दा त्यो देवता र असुरद्वारा वन्दित हुन्छ। कुनै पनि मन्त्रको अरू मालाबाट जप गर्दा १० गुना फल प्राप्त हुन्छ भने रुद्राक्षमालाबाट जप गर्दा हजारौं गुना फल प्राप्त हुन्छ। ध्यानमा चित्त लगाई रुद्राक्षमालाद्वारा जप गर्दा अनन्त फलप्राप्ति हुन्छ। यसै प्रसङ्गमा एकमुखेदेखि चौधमुखेसम्मका रुद्राक्षको विशेष फल र चौधमुखेभन्दा माथिका रुद्राक्षहरूको सामान्य फल बताइन्छ

एकमुखे रुद्राक्ष साक्षात् शिवस्वरूप मानिएको छ। यसको धारण गर्नाले ब्रह्महत्याको पापनाश हुन्छ। भनिएको छ-

वक्त्राणां च फलं वच्मि रुद्राक्षाणां पृथक् पृथक्। एकवक्त्रः शिवः साक्षात् ब्रह्महत्यां व्यपोहति॥ (हि.ख. १/११/१३७)

दुईमुखे रुद्राक्षलाई विष्णुस्वरूप मानिस मानिएको छ। त्यसलाई धारण गर्दा गोहत्याजनित पाप नाश हुन्छ। तीनमुखे रुद्राक्षलाई अग्निस्वरूप मानिएको छ। त्यसलाई धारण गर्दा स्त्रीहत्याको पाप नाश हुन्छ। चारमुखे रुद्राक्षलाई ब्रह्माजीको स्वरूप

मानिएको छ। त्यसलाई धारण गर्दा नरहत्याको पाप नाश हुन्छ। पाँचमुखे रुद्राक्षलाई कालाग्निरुद्रको स्वरूप मानिएको छ। त्यसलाई धारण गर्दा अगम्यगमन, अभक्ष्यभक्षण, अदृश्यदर्शन, अवाच्यभाषण लगायतका सबै पाप नाश हुन्छन्। भनिएको छ–

पञ्चवक्त्रस्तथा रुद्रः कालाग्निर्नाम भीषणः। पञ्चवक्त्रस्य माहात्म्यं शृणु मुने समाहितः॥

अगम्यगमनाच्चैव अभक्ष्यभक्षणात्तथा। मुच्यते सर्वपापेभ्यः पञ्चवक्त्रस्य धारणात्॥ (हि.ख. १/११/१४०-१४१)

छमुखे रुद्राक्षलाई कुमारजीको स्वरूप मानिएको छ। यसलाई दायाँ बाहुमूलमा धारण गर्नाले धारक सबै पापबाट मुक्त हुन्छ। त्यसले सङ्ग्राममा विजय प्राप्त गर्दछ, त्यो भय र पातकबाट मुक्त हुन्छ। छमुखे रुद्राक्षलाई दुवै हात र कण्ठमा धारण गर्नाले साधक सबै प्राणीद्वारा अवध्य हुन्छ र पृथिवीमा भगवान् रुद्रसमान विचरण गर्दछ।

सातमुखे रुद्राक्ष नागराज भगवान् अनन्तको स्वरूप मानिएको छ। त्यसलाई धारण गर्दा सौभाग्य, स्वर्णसम्पदा एवं सुख प्राप्त हुन्छन्, शत्रुको नाश हुन्छ, रोगको नाश हुन्छ, बलवृद्धि हुन्छ र चित्तनाश हुन्छ। आठमुखे रुद्राक्ष भगवान् शूलपाणिको स्वरूप हो। त्यसलाई धारण गर्ने मानिस शतायु हुन्छ। नौमुखे रुद्राक्षलाई भगवान् भैरवको स्वरूप मानिएको छ। त्यसलाई बायाँ हातमा धारण गर्ने साधक अतुलित बलधाम बन्दछ र नवग्रह, भूत, प्रेत, पिशाच, डाकिनीगण र अन्य धेरै किसिमका देवी–देवताहरूले कुनै किसिमको विघ्नबाधा पैदा गर्न सक्दैनन्। हजार, लाख एवं करोडको संख्यामा गरिएका ब्रह्महत्याहरूबाट उत्पन्न पाप समेत नौमुखे रुद्राक्षको धारण गर्नाले नाश हुन्छ।

दशमुखे रुद्राक्ष साक्षात् जनार्दन भगवान्‌को स्वरूप हो। दशमुखे रुद्राक्ष धारण गर्नाले सबै ग्रह, पिशाच, वेताल, ब्रह्मराक्षस र विषालु सर्पहरू नाशमा प्राप्त हुन्छन्। एघारमुखे रुद्राक्ष एघार अंशले सम्पन्न सर्वेश्वर परमात्मा शम्भुको स्वरूप हो। साधकले त्यसलाई नित्य शिखामा धारण गर्नुपर्दछ। एघारमुखे रुद्राक्षलाई नित्य शिखामा धारण गर्दा हजार अश्वमेध र सय वाजपेय यज्ञसम्पन्न गर्दा प्राप्त हुने फल हस्तगत हुन्छ। भनिएको छ–

एकादशास्यरुद्राक्षमंशैरेकादशैर्मुने। ईश्वरस्य समं प्रोक्तं शम्भोर्नाम महाविभोः॥

शिखायां धारयेन्नित्यं तस्य पुण्यफलं शृणु। अश्वमेधसहस्राणि वाजपेयशतानि च।

तत्फलं लभते नित्यं तद्रुद्राक्षस्य धारणात्॥ (हि.ख. १/११/५२-५४)

बाह्रमुखे रुद्राक्षलाई सूर्यको अत्यन्त ज्योतिर्मय स्वरूप मानिएको छ। यो रुद्राक्ष सूर्यका बाह्र अंशले सुहाएको छ। निरन्तर बाह्रमुखे रुद्राक्ष धारण गर्ने साधक महातेजस्वी बन्दछ। केशान्तसंस्कार सम्पन्न गरेपछि त्यसलाई धारण गर्ने साधक सूर्यसमान बन्दछ। यस्तो साधकलाई कठोर नवग्रहले केही गर्न सक्दैनन्। यस रुद्राक्षलाई धारण गर्ने व्यक्तिका लागि गोमेध, उपवास एवं गोव्रतका जुन फल बताइएका छन् ती सबै प्राप्त हुन्छन्। रोगी पीडाबाट मुक्त हुन्छ र अभागी सौभाग्यशाली बन्दछ।

तेह्रमुखे रुद्राक्षलाई कामदेवको स्वरूप मानिएको छ। जसले उक्त रुद्राक्षलाई कण्ठमा धारण गर्दछ त्यसलाई भगवान् रुद्र नै मान्नुपर्दछ। त्यो वास्तवमा दोस्रो कामदेवसमान हुन्छ। त्यसले आफ्नो आकर्षणशक्तिका कारण सुन्दरीहरूलाई सम्मोहित तुल्याउँछ, सबै किसिमका कार्यहरूमा सफलता प्राप्त गर्दछ, सबै सौभाग्य र सम्पत्तिले त्यसलाई पछ्याउँछन्। जन्मदा भाग्यहीन भए पनि त्यसले सबै कार्यमा सफलता पाउँछ।

चौधमुखे रुद्राक्ष सनातन परब्रह्मको स्वरूप हो। सर्वतेजोमय ब्रह्मरूप चौधमुखे रुद्राक्षलाई नित्य शिरमा धारण गर्नुपर्दछ। त्यो रुद्राक्ष चौधै भुवनको मूर्तिका रूपमा रहेको हुन्छ। त्यसैले चौधमुखे रुद्राक्षलाई सर्वोत्तम मानिएको छ। जसले चौधमुखे रुद्राक्ष धारण गर्दछन्, तिनीहरूले आफ्नो शिरमा चौधै भुवन धारण गर्दछन्। चौधमुखे रुद्राक्ष धारण गर्ने व्यक्तिले सबै किसिमका सिद्धि लाभ गर्दछ, पातकबाट मुक्त हुन्छ र पृथिवीमा दिइने दानहरूको फल प्राप्त गर्दछ। त्यसले तीर्थाटनको सम्पूर्ण पुण्य प्राप्त गर्दछ। पूजा, उपवास र पुण्यकर्मका सबै फल प्राप्त गर्दछ। मानिस भए पनि त्यसले देवताले झैँ सुखभोग गर्दछ र चिरकालसम्म सम्पूर्ण कामनाको फल प्राप्त गरी अन्तमा परमपदमा प्राप्त हुन्छ। भनिएको छ–

सर्वतीर्थेषु यत् पुण्यं सर्वयज्ञेषु यत् फलम्। पूजोपवासधर्मेषु तत्फलं लभतेऽनिशम्॥

देववन्मानुषो भूत्वा भुनक्ति सकलं सुखम्। सर्वकामांश्चिरं भुक्त्वा गच्छति परमं पदम्॥ (हि.ख. १/११/६९-७०)

पन्ध्रमुखे आदि अरू रुद्राक्षहरूको धारण गर्दा साधारण फल प्राप्त हुन्छ। यसरी संसारसागरदेखि पार लगाउने रुद्राक्षधारणको फल बताइयो। (हिमवत्खण्ड, प्रकरण- १, अध्याय- ११)

### ४.५ मानसरोवरको उत्पत्ति र महिमा

प्राचीनकालमा सकल लोकको कल्याणका लागि ब्रह्माजीले हिमालय- कैलासको शिखरमा "मान" नामक तलाउ बनाउनुभयो। त्यो तलाउ संसारमा मानसरोवर वा मानससरोवरका नामले विख्यात छ। त्यसमा मानिसले श्राद्ध, तर्पण, पूजा, होम आदि पुण्यकर्म गर्दछन् भने ती सबै कर्म अविनाशी हुन्छन्।

एकपटक प्रसन्नात्मा ब्रह्माजीले तीस योजन लामो, तीस योजन चौडा र तीस योजन गहिरो खाडल तयार गरी गङ्गाजीको आवाहन गर्नुभयो र मनमनै भगवान् शिवको ध्यान गर्नुभयो। त्यस अवसरमा अतिनिर्मल जल भएकी गङ्गा त्यहाँ प्रकट भइन्। गङ्गाजल देखेर ब्रह्माजीको प्रसन्नताको सीमा रहेन। ब्रह्माजीले लोककल्याणका र लोकलाई संसारसागरबाट तार्नका लागि गङ्गाको वन्दना गरी उनलाई आशीर्वाद दिँदै भन्नुभयो- हे देवी ! तिमी सधैँ यस सरोवरमा विराजमान होऊ। जलरूपा तिमीलाई नमस्कार गर्दछु। मुक्ति चाहनेलाई मुक्ति र भक्ति गर्नेलाई वर प्रदान गर्ने हे कल्याणी गङ्गा ! तिमीले जलरूप धारण गरी बसेको यस मानसरोवरमा एकपटक मात्र भए पनि जुन मानिसले स्नान गर्नेछ त्यसले अर्को जुनी लिनुपर्ने छैन। यहाँ स्नान गर्ने मानिसमात्र होइन, जुनसुकै प्राणी पनि संसारसागरबाट मुक्त हुनेछन्। यसरी गङ्गाजीलाई आशीर्वाद दिएर ब्रह्माजीले त्यहाँ सुन्दर संसारको सृष्टिका लागि दिव्य एकसय वर्षसम्म तपस्या गर्नुभयो।

सर्वप्रथम ब्रह्माजीले मनबाट सप्तर्षिहरूको सृष्टि गर्नुभयो। भगवान् महादेवको कृपाबाट उहाँले देवतासहित चार किसिमका जीवात्माहरूको सृष्टि गर्नुभयो। केही समयपछि सप्तर्षिहरूले पनि छुट्टाछुट्टै बसी भगवान् शङ्करको आराधना गर्दै कठोर तप गरे। सातैजना ती ऋषिले समानरूपमा स्नान र पूजा गरी गङ्गाजीको आवाहन गरे।

"यी ऋषिहरूले एउटै समयमा समानरूपमा मेरो आवाहन र पूजा गरे। म सर्वप्रथम कुन ऋषिको नजिकमा जाऊँ" भनी चिन्तामा परेकी गङ्गाजीले आफ्नो एक अंशलाई सातवटा धारामा परिणत गरेर ती ऋषिहरूको नजिकमा सँगसँगै आफूलाई पुऱ्याइन् अर्थात् सातवटा धारा भएर बगिन्। ती सातै धाराले पर्वतको थुम्काबाट आफूहरूलाई छुट्टाछुट्टै खसाली ऋषिहरूको नजिकैबाट बग्दै आएर मानसरोवरमा प्रवेश गरे। यसरी सबै ऋषिहरूको सम्मान गर्दै सातवटा धारा भएर बगेकी गङ्गाजीलाई देखेर सातै ऋषिले प्रसन्न भएर आशीर्वाद दिँदै भने- हे गङ्गा ! स्नानकार्यको उद्देश्यले हामीहरूको छेवैबाट बगेर आएकी हुनाले आजदेखि तिमी सात किसिमका फलप्रदान गर्न समर्थ हुनेछौ। तिमीले प्रदान गर्ने सात किसिमका फल क्रमशः धर्म, अर्थ, काम, मोक्ष, सौभाग्य, उत्तम, पराक्रम र राज्य हुनेछन्। यसरी गङ्गाजीलाई आशीर्वाद दिने ती सप्तर्षिले शिवको आराधना गर्दै तपस्या गरे। पार्वती र परमेश्वरको कृपाले निर्मल गङ्गाजलले भरिएको त्यो मानसरोवर पनि सातै किसिमका फल प्रदान गर्न समर्थ भयो।

प्राणीहरूको हित गर्ने उद्देश्यले ज्येष्ठ महिनाको शुक्लपक्षको दशमी तिथि (दशहरा) का दिन भगवान् शङ्कर हाँसको रूप लिएर मानसरोवरमा प्रकट हुनुभयो। उहाँ सुन्दर एवं सुलक्षण हंसका रूपमा जलविहार गर्न लाग्नुभयो। त्यस अवसरमा भगवती गौरी पनि हंसीको रूप लिएर मानसरोवरमा प्रकट हुनुभयो। त्यसपछि हंसरूप महादेव र हंसीरूपा गौरी दिव्य एकहजार वर्षसम्म मानसरोवरमा विहार गर्दै विचरण गर्नुभयो। मानसरोवरको निर्मल जलमा कमलको डाँठको गुदी खाएर डुलिरहेका हाँसका जोडी देखेर शिवशक्तिस्वरूप मानी ब्रह्माजी प्रसन्न हुनुभयो।

हाँसको रूप लिएर शिव र शक्तिले सरोवरलाई पवित्र र रमणीय तुल्याउनुभएको देखेर ब्रह्माजीले पनि हाँसकै रूप लिनुभयो। त्यसपछि भगवान् विष्णु र धर्मदेवले पनि दिव्य हाँसकै रूप लिनुभयो। ब्रह्मा आदि देवताहरूले हाँसको रूप लिएर कमलका डाँठ चुस्दै क्रीडापूर्वक दिव्य एक हजार वर्ष बिताए। फेरि एक दिन हंसरूप महादेवले हाँसका रूपमा रहेका सबै देवतालाई वरिपरि राखेर क्रीडा गर्नुभयो। हंसरूप ब्रह्माजीले एक दिन मानसरोवरको पूर्वपट्टिको थुम्को फोर्नुभयो। त्यस अवसरमा ठूला छालले भरिभराउ भएको सरोवरको जल वेगपूर्वक छचल्किदै बाहिर निस्क्यो। त्यसलाई सम्बोधन गर्दै ब्रह्माजीले भन्नुभयो- हे नद ! तिमी गम्भीर तरङ्गका साथ पुरुषको गतिमा टकुराबाट फाल हालेर बाहिर निस्कियौ, तसर्थ तिमी मेरा पुत्र भयौ। तिमीलाई लोकले ब्रह्मपुत्र नद भनी पुकार्नेछ। तिम्रो जलमा स्नान गर्ने मानिसका मैला पखाली तिमीले उनीहरूलाई धर्म, अर्थ, काम र मोक्षको फल प्रदान गर्नेछौ।

हाँसका रूपमा रहनुभएका महादेवले सरोवरको दक्षिणतर्फको थुम्को फोर्नुहुँदा त्यहाँबाट उत्तम जल भएकी नदी नाच्दै खेल्दै फाल हाल्दै बाहिर निस्किइन्। ती नदीलाई सम्बोधन गर्दै ब्रह्माजीले भन्नुभयो- हे नदीहरूमा श्रेष्ठ मेरी छोरी ! तिमी सौम्य चालले बग्दै आयौ। भगवान् रुद्रको प्रयत्नबाट प्रकट भएकी हुँदा तिमीलाई सबैले शतरुद्रा अर्थात् सतलज भनी पुकार्नेछन्। त्रेतायुगमा देवगङ्गा भई तिमीले रघुका सन्तानको मनोरथ सिद्ध गराउनेछ्यौ।

हाँसका रूपमा रहनुभएका विष्णुले उत्तरतर्फको थुम्को फोर्नुहुँदा तीव्र वेग भएकी र जलले भरिएकी फराकिली नदी पैदा भइन्। ब्रह्माजीले तिनीलाई सम्बोधन गर्दै भन्नुभयो– हे उत्तमरनदी ! तिमी विष्णुको प्रयत्नबाट पैदा भएकी हुनाले विष्णुपदी नामले प्रसिद्ध हुनेछ्यौ। तिम्रो जलमा नुहाउने भक्तहरूलाई भुक्ति एवं मुक्ति प्रदान गर र तिनका मनोरथ पूर्ण तुल्याऊ। हे विष्णुपदी ! जसले तिम्रो जलमा एक पटक स्नान गर्दछ। त्यसलाई विष्णुलोकमा पठाउने काम गर।

यसैगरी धर्मदेवले पश्चिमको थुम्को फोर्दा छालैछालसँग प्रकट भएकी दिव्यनदी धर्मगङ्गालाई सम्बोधन गर्दै ब्रह्माजीले भन्नुभयो– हे धर्मनदी ! मोक्षका इच्छुकहरूलाई तिमीले आफ्नो धर्मप्रतापले तिनका पूर्वजन्मका पाप पखालिदिएर निर्मल तुल्याऊ। हे छोरी ! जसले मेरो कुण्ड अर्थात् ब्रह्मकुण्ड (मानसरोवर) मा स्नान गर्दछ त्यसले आफ्ना सबै पाप पखाली सम्पूर्ण यज्ञको फल पाउँछ।

यसरी मानसरोवरबाट जलका वसुधाराझैं उक्त चार धारा निस्के बग्दै गए। ती धाराको दर्शन गरी ब्रह्माजीले खुसी भएर ब्रह्मपुत्र, शतरुद्रा, विष्णुपदी र धर्मगङ्गा भनी नामकरण गर्नुभएको हो। वास्तवमा चार धाराको मुहान मानसरोवरमा जसले स्नान गर्दछ त्यो निष्पाप र यज्ञफलभागी हुन्छ। हिमालयको कैलास पर्वतमा आरोहण गर्नाले मात्र पनि मानिसका सबै पाप छुट्दछन्। दिव्य मानसरोवरको दर्शन गर्नाले मात्र मनोरथ पूरा हुन्छ। त्यहाँ गएर पूजा–आजा, जप तप केही गर्न नसके पनि कुनै दिन दैवसंयोगले श्रद्धापूर्वक स्नानमात्र गर्नाले साधकले महापुण्य पाउँछ। त्यो दुःखमय संसारसागर तरेर चौरासी जुनीको चक्र छाडी गर्भवासको कष्टदेखि मुक्त भएर परमपदमा जान पाउँछ। भनिएको छ–

निर्मुक्तः सर्वपापेभ्यो गिर्यारोहणमात्रतः। प्रेक्ष्य सरो बुधो दिव्यं मनःकामं ध्रुवं लभेत्॥

कदाचिद्दैवयोगेन भक्त्याऽत्र स्नाति यो जनः। जपार्चनप्रसक्तस्य तस्य पुण्यफलं महत्॥

उत्तीर्य दुःखसंसारैः सर्वजन्म विहाय च। गर्भावासं महत् कष्टं व्रजेत्तु परमं पदम्॥ (हि.ख. १/१५/७३–७५)

ब्रह्माजीले मानसरोवरसहित ती चार धारालाई यसरी आशीर्वाद दिएर फेरि पनि हाँसकै रूपमा अरू देवताका साथ त्यहाँ विहार गर्न लाग्नुभयो।

कालान्तरमा त्यहाँ देवता, गन्धर्व, गुह्यक, सिद्ध, दैत्य, अप्सरा आदि सबैले स्वर्ग आदि विभिन्न लोकबाट आएर तपस्या गरे। ब्रह्माजीले नदीहरूलाई सम्बोधन गर्दै भन्नुभयो– हे पवित्र गङ्गाधाराहरू ! कलियुगमा पनि यो मानसरोवर स्वर्गबाट आएका देवताले भरिभराउ हुनेछ र कहिल्यै खाली हुनेछैन। पृथिवीको स्तनरूप सुमेरुपर्वतमा रहेको जम्बुद्वीप त्यसमाथि रहेको यो मानसरोवर, अरू के चाहियो ? यसको जलस्पर्श गर्नाले मात्र धेरै मानिस संसारसागर तर्दछन् र जन्म–मृत्युको चक्रबाट मुक्त भई परमपदमा प्राप्त हुन्छन्। (हिमवत्खण्ड १/१५ अध्याय)

## ४.६ ध्रुवको विलक्षण त्याग एवं हिमालयमा कठोर तपस्या र शिवाराधना

अघि स्वायम्भुव मनुका छोरा उत्तानपादनामक सबैद्वारा सम्मानित राजा भए। उनका सुनीति र सुरुचि नामका दुई रानी थिए। जेठी रानी सुनीतिबाट पैदा भएका बालक त्रिलोकीमा नै ध्रुवनामले प्रसिद्ध भए। कान्छी रानीबाट पैदा बालक उत्तम नामले प्रसिद्ध भए। हिमवत्खण्डमा वर्णन गरिएअनुसार उत्तम ध्रुवभन्दा जेठा थिए।

एक दिन राजा उत्तानपाद आफ्नो कक्षमा बसेका थिए। खेल्दै खेल्दै दुई दाजुभाइ बाबुको नजिकमा पुगे। उत्तानपादले कान्छी रानीतर्फका छोरा उत्तमलाई काखमा लिएर माया गरे तर ध्रुवलाई कत्ति पनि वास्ता गरेनन्। ध्रुवले आफ्नै पिताले दाजु र आफूमा फरक व्यवहार गरेकोमा निकै दुःख माने। उनी झटपट आफ्नी आमाको नजिकमा गए। उनले भने– आमा ! पिताजी दाजु उत्तमलाई काखमा राखी सभामा बस्नुभयो। मलाई देखी देखी पनि वास्ता गर्नुभएन, दाजु उत्तमबाट मात्र प्रसन्न हुनुभयो। धर्मका ज्ञाता पिताजीका निमित्त दाजु उत्तम त्यतिविधि प्यारो, म मन नपरेको किन भएँ ?

ध्रुवको कुरा सुनेर आमाले मीठो बोलीमा भनिन्– हे बाबु ! तिमीले दुःख नमान। पूर्वजन्ममा जसले जे राखेको छ त्यही पाइन्छ। दाता दैव हुन्, नृपाङ्ग, विप्राङ्ग, देवाङ्ग र मनुष्याङ्ग गरी अङ्ग चार किसिमका हुन्छन्। पूर्वजन्ममा जुन कर्म गरिन्छ त्यसलाई दैव भनिन्छ। यस्तो विचार गर्दै धैर्यशाली पुरुष कस्तै दुःख पर्दा पनि आत्तिँदैनन्। धैर्यशाली पुरुषहरू नआत्तिनुमा तपस्या ठूलो कारण बनेको हुन्छ। तपस्याको ठूलो प्रभाव र महिमा छ। त्यसबाट नपाइने कुरा केही छैन। बाबु ! तिम्रो पूर्वजन्मको तपस्या रहेनछ। त्यसैले आज तिमीले तिम्रा पिताको माया पाउन सकेनौ।

बालक ध्रुवले आमाको कुरा राम्ररी सुने। बाबुले अनादर गरे पनि आमाको कुराबाट उत्साहित भए, खुसी पनि माने। तुरुन्तै उनी तपस्या गर्न तयार भई वनतर्फ लागे। भोक–तिर्खाको ख्यालै नगरी निर्जन घना जङ्गल भएको, सिंह, बाघ, भालु, हात्ती, गैंडामात्रै चर्ने ठाउँमा एक्लै जोस्सिएर गए।

गहन वनमा पुगेका बालक ध्रुवले सहसा सप्तर्षिहरूको दर्शन पाए। सबैलाई प्रणाम गरी हात जोडेर प्रदक्षिणा गरे। बारम्बार भक्तिस्तोत्र पाठ गरे। उनलाई देखेर दङ्ग परेका सप्तर्षिहरूले सोधे– बाबु ! तिमी को हौ ? कुनै मानिस पस्न नसक्ने बाक्लो र डरलाग्दो वनमा तिमी यति सानो मान्छे कसरी आयौ ? वनका डरलाग्दा जन्तुले लखेटेर तिमीलाई यहाँ ल्याइपुर्‍याए कि ? ध्रुवले बिन्ती गरे– प्रभु ! त्यसो होइन। म आफ्नै खुसीले यहाँ आएको हुँ। मेरा पिता राजा उत्तानपादले मेरो अनादर गर्नुभयो। मेरी कान्छी आमाका छोरा दाजु उत्तमलाई माया गरी मेरो अनादर गरेको देखेर म दुःखी भएँ। आमासँग बिलौना गरेँ। आमाको उपदेशले म अहिले तपस्या गर्न भनी आफैँ यो घोर वनमा आइपुगेको छु। मेरो नाम ध्रुव हो। दाजुलाई काखामा राखी खुसी हुने र मेरो अपमान गर्ने पिताजीको चरित्र देखेर मलाई वैराग्य लाग्यो। बरु मरियोस् तर कठोर तपस्या नगरी बस्दिनँ भनी म यहाँ आएको हुँ। भनिएको छ–

विभोरुत्तानपादस्य पुत्रोऽहं च प्रजापतेः। इहागत उदासीनो ध्रुवो नामेति विश्रुतः॥

मां त्यक्त्वा तनयं क्रोडे निधायान्यं पिता मम। सभामध्ये स्थितो हर्षं तस्माद् वैराग्यवानहम्॥

अतः समागतः तप्तुं तपः कठोरमिच्छया। जीवितुमिह नेच्छामि सत्यमेतन्महर्षयः॥ (हि.ख. १/२२/२१-२३)

ध्रुव फेरि भन्दछन्– हे महर्षिहरू ! भाग्यले गर्दा मैले आज हजुरहरूजस्ता महर्षिहरूको दर्शन पाएँ। म हजुरहरूकै सेवा–टहल गरी यहीँ बस्न चाहन्छु। अनाथ बालकमाथि कृपा गर्नुहोस्। मलाई उपदेश दिनुहोस्। सुख र दुःखले भरिएको यो शरीर क्षणिक छ। यसबाट मोक्षको बाटोमा जान सकियो भने त्यही नै ठूलो लाभ हो।

बालक ध्रुवका गम्भीर कुरा सुनेर सप्तर्षिहरू छक्क परे। यति सानो बालकको यो कत्रो साहस हो यो ? यी बालकको अपूर्व बुद्धि रहेछ भन्ने विचार गरी भने– बाबु ! तिमी साना छौ, तिमीले सक्छौ भने अग्ला अग्ला शिखर भएको हिमालयको सर्वोच्च शिखरमा गएर महादेवको मन्त्र जप। त्यहाँ सबै कामना पूर्ण गराउने कामतीर्थ छ। कामधारा नदीमा स्नान गरेर सर्वोच्च शिखरमा रहेको कामतीर्थमा जाऊ।

सप्तर्षिहरूको उपदेश पाई योगबलसम्पन्न बालक ध्रुव हिमालय पर्वतमा गए। सुख–दुःखलाई बेवास्ता गरी आनन्द मानेर मोहरूप काँचुली फ्याँकी ज्ञानकवच भिरेर बालक ध्रुव तपस्या गर्न तत्पर भए। हिमालयपर्वतको आग्नेय भागमा रहेको अनेक थरी ठूलाठूला र डरलाग्दा गुफा भएको त्यस क्षेत्रमा ब्रह्मपुत्र नद बगिरहन्छ, त्यहाँ आएर कामधारा नदी ब्रह्मपुत्रमा एकाकार हुन्छिन्। त्यस सङ्गमलाई कामतीर्थ भनिन्छ। त्यो कामक्षेत्र हो। त्यहाँ कामाख्या भगवती विराजमान हुनुहुन्छ। त्यस तीर्थमा स्नान गरेपछि सम्पूर्ण पाप पखालिन्छन्। त्यस तीर्थमा स्नान गरी रुद्राक्ष र भस्मधारण गरेर बालक ध्रुवले हिमालयको सर्वोच्च शिखरमा प्रवेश गरे। कुनै प्राणी जान नसक्ने चुचुरोमा पुगेर ध्रुवले निश्चल भई योगासन कसे। हजार वर्षसम्म रुद्रमन्त्र जपेर रोमाञ्चित हुँदै ध्रुवले भगवान् शिवको स्तुति गर्दै भने–

ॐ नमः शिवाय भव्याय भद्ररूपाय तेजसे। तेजसां पुञ्जदेहाय ज्योतिषां पतये नमः॥

त्राहि मां देव भूतेश ! संसारदुःखसागरात्। अज्ञानातितमोनिम्नकूपान्धपतितं विभो॥ (हि.ख. १/२२/३९-४८)

यसरी ध्रुवको स्तुतिवचन सुनेर भगवान् शङ्कर अत्यन्त प्रसन्न भई उनका सामु प्रकट हुनुभयो। उहाँले भन्नुभयो– बाबु ध्रुव ! तिमीले दुनियालाई चकित तुल्याउने तप गर्‍यौ। सम्पूर्ण इन्द्रमाथि विजय गरी अन्नपानी छाडेर मेरो आराधना गर्‍यौ। बाबु ! तिमी धन्य भयौ। तिमीले अचल भएर अचलराज हिमालयको दुर्गम शिखरमा बसी आफ्नो मन ममा लगाई तपस्या गरेकाले म तिमीदेखि प्रसन्न भएको छु। हे बाबु ! अब उप्रान्त तिमी स्वर्णिम सुमेरु पर्वतको सर्वोच्च शिरोभागमा विराजमान हुनेछौ। त्यो तिम्रो धाम ध्रुवलोकका नामबाट विख्यात हुनेछ। संसार र सबै लोक चलायमान हुँदा तिमी अचल भएर रहनेछौ।

यसरी वर प्रदान गरी भगवान् शङ्कर अन्तर्धान हुनुभयो। त्यसपछि ध्रुवको समीपमा ब्रह्माजी आइपुग्नुभयो। उहाँले ध्रुवलाई ध्रुवलोकमा राज्याभिषेक गरिदिनुभयो र सुमेरुको सर्वोच्च शृङ्गमा विराजमान गराउनुभयो।

(हिमवत्खण्ड, प्रकरण- १, अध्याय- २२)

## ४.७ महर्षि दधीचिको परम त्याग

महाबली हिरण्याक्ष र हिरण्यकशिपुले स्वर्गमा आक्रमण गरी इन्द्र आदि देवतालाई पराजित गरे। आत्तिएका इन्द्र बृहस्पतिको सल्लाहअनुसार भगवान् शिव विराजमान हुनुभएको कामाक्षापीठमा गए। कामाक्षापीठमा भगवती कामाक्षाको आश्रममा गई गुफामा एकान्तवास गरिरहनुभएका भगवान् शिवको प्रार्थना गरे।

अनुमतिविना शिव र शिवाको एकान्तविहार गर्ने स्थलमा आएका देवताहरूलाई देखेर भगवती कामाक्षा साह्रै रिसाउनुभयो। उहाँले भन्नुभयो– हे मूर्ख देवताहरू ! कत्ति पनि विचारै नगरी मेरो गोपनीय आवासमा प्रवेश गर्‍यौ। त्यसकारण

तिमीहरू रूख बन्नेछौ। देवीको सराप सुनेर देवताहरूले थर्थर काँप्दै उँधोमुख लाए। इन्द्राणीले आत्तिएर भगवती कामाक्षाको स्तुति गर्दै भनिन्– हामी देवताका पत्नीहरू पतिविना कसरी बसौं ? देवताहरू जड रूख बन्दा हामीहरूको लोकमा निन्दा हुनेछ। कृपया देवताहरूलाई रूख नबनाउनुहोस्। इन्द्राणीको आर्तपुकार र स्तुतिबाट प्रसन्न भएकी कामाक्षादेवीले भन्नुभयो– हे इन्द्राणी ! मैले तिमी स्त्रीहरूको दुःख र वेदना बुझेकी छु। भैगो, तिम्रा पतिहरू एकएक अंशले मात्र वृक्ष हुनेछन्। हे इन्द्राणी ! जाऊ, इन्द्रका साथ सुखपूर्वक विहार गर।

त्यो घटनापछि देवताहरू एकएक अंशले मात्र वृक्ष बने। वस्तुतः वृक्षहरू देवांश भए। ब्रह्माजी वटका रूपमा, विष्णु भगवान् पीपलका रूपमा, इन्द्र डुम्रीका रूपमा, शिवजी बेलका रूपमा, कदम सूर्यका रूपमा र अरू सबै वृक्ष पनि विभिन्न देवताहरूको अंशका रूपमा परिणत भए। त्यसबेला हिरण्याक्ष र हिरण्यकशिपुबाट युद्धमा पराजित भई कामाक्षापीठमा आएका देवताहरूले भगवान् शिवको प्रार्थना गर्दै भने– हे ईशान ! हे सर्वेश्वर ! हाम्रो रक्षा गर्नुहोस्। हामी हिरण्यकशिपु र हिरण्याक्षको अत्याचारबाट आजित भई हजुरको शरणमा आएका छौं। हामी शरणागतहरूको सङ्कट निवारण गर्नुहोस्।

भगवान् शिवले दर्शन दिएर भन्नुभयो– हे देवता हो ! हिरण्यकशिपुले तपस्याको फल पाएको हो। त्यसको भोग सिद्धिएपछि भगवान् विष्णुले त्यसको वध गर्नुहुनेछ। तपस्याले तेजस्वी भएका दैत्यहरू फलामका हतियारले मर्दैनन्, तिनीहरू त हाडबाट बनेका हतियारबाट अवश्य मर्नेछन्। यहाँदेखि ऐशान्य दिशातर्फ दश योजन पर सुन्दरशैल छ। त्यहाँ महर्षि दधीचि तपस्या गरिरहेका छन्। सुन्दरतीर्थमा नुहाएर सबैद्वारा पूजित भगवती सुन्दरी माईलाई पलाशका पुष्प अर्पण गरी पूजा र स्तुति गर्दछन्। तपाईंहरू त्यहाँ गई दधीचिसँग उनका हाड माग्नुहोस्। तिनै हाडले बनेका हतियारबाट डराएका दैत्यहरू स्वर्गबाट पलायन गर्नेछन्।

भगवान् शिवको आज्ञानुसार देवताहरू सुन्दरशैलको सुन्दरतीर्थमा पुगे। त्यहाँ दधीचिमुनिलाई तपस्या गरिरहेको अवस्थामा देखे। उनलाई दण्डवत् प्रणाम गर्दै बिन्ती गरे– हे महामुनि ! हजुरलाई नमस्कार गर्दछौं। हामी सङ्कटमा परेका देवताहरू हजुरको शरणमा आएका छौं। हामीलाई सङ्कटमुक्त तुल्याउनुहोस्।

दधीचिले भने– हे देवताहरू ! म तपाईंहरूलाई स्वागत गर्दछु। किन यहाँ आउनुभयो ? कसबाट तपाईंहरूलाई सङ्कट पऱ्यो ? मलाई बताउनुहोस्। देवताहरूले भने– हे मुनिवर ! हिरण्यकशिपुले स्वर्गराज्य हऱ्यो। हजुरले अरूको उपकारका लागि प्राण पनि दिएर परोपकार गर्नुहुन्छ भन्ने कुरा हामीले भगवान् शिवबाट थाहा पाएका छौं। हे दाता महर्षि ! हामी तपाईंका सामु तपाईंका शरीरको हाड माग्न आएका छौं। कृपया हामीलाई हजुरको आफ्नो शरीरको हाड प्रदान गर्नुहोस्। दधीचिले भने– एउटाको रक्षाका लागि धेरैको हत्या गर्दा ठूलो पाप लाग्छ, धेरैका लागि एउटालाई मार्दा पाप लाग्दैन। हे देवगण ! पाँच महाभूतबाट बनेको र क्षणमा नाश हुने यो शरीर छ। तपाईंहरूका सङ्कट निवारण गर्न निश्चय नै म यो शरीर दिन्छु। यही कुरालाई यसरी बताइएको छ–

पाञ्चभौतिकमङ्गं मे क्षणविध्वंसनं सुराः। अतो दास्याम्यहं देहं युष्मदुद्धरणाय हि॥ (हि.ख. २/३१/३६)

दधीचिले यसरी आफ्नो भाव प्रकट गरी मोक्षदायक सुन्दरतीर्थमा गएर योगबलले शरीरत्याग गरी मोक्ष प्राप्त गरे। दधीचिले शरीरत्याग गरेपछि विश्वकर्माले दधीचिका हाड झिकेर शस्त्रास्त्र तयार गरे। गदा, पाश, वज्र, शक्ति, बाण, मुग्रो, ब्रह्मास्त्र, पाशुपतास्त्र, वैष्णवास्त्र आदि अनेकौं हतियार तयार भए। ब्रह्माजीले ती शस्त्रास्त्रको संस्कार गर्नुभयो र मन्त्रपूर्वक एक एक गरी देवताहरूलाई दिनुभयो। ब्रह्माजीले आफूलाई ब्रह्मास्त्र सुरक्षित गरी शिवजीलाई पाशुपतास्त्र, भगवान् शिवलाई वैष्णवास्त्र, इन्द्रलाई वज्र र कुमारलाई शक्ति प्रदान गर्नुभयो।

शस्त्रास्त्र प्राप्त गरेपछि देवताहरूले सुन्दरतीर्थमा स्नान गरेर सुन्दरी देवीको स्तुति गरे र स्वर्गराज्यप्राप्तिको वरदान मागे। देवीबाट वरदान प्राप्त गरी देवताहरूले स्वर्गमा गई सिंहनाद गरे, रणभेरी बजाए र धनुष्टङ्कार गरे।

शुक्राचार्यले देवताहरूको गतिविधि बुझेर हिरण्यकशिपुलाई "अहिले देवताहरू सुन्दरी भगवतीको वरदानबाट बलिया भएका छन्, युद्ध गर्नु उचित हुँदैन" भनी सम्झाए। उता देवताहरूले अमरावतीलाई चारैतिरबाट घेरे, बारम्बार बाणवर्षा गरे। त्यहाँ युद्ध भयो। दधीचिका हाडबाट बनेका हतियारद्वारा इन्द्रले कोटि कोटि दैत्यहरूलाई मारे। अरू दिक्पाल एवं देवताहरूले दधीचिको हाडद्वारा बनेका हतियारद्वारा कोटि कोटि दैत्यहरूको संहार गरे। त्यसपछि डराएका कोटि कोटि राक्षस हिरण्यकशिपुलाई अघि लाएर आफ्नो स्थानमा जान भनी स्वर्गबाट पलायन गरे।

त्यसबेला हिरण्याक्ष दैत्यले सबैसँग भन्यो– "हामी युद्धपराङ्मुख भई भाग्यौं, यो हामी वीरका लागि अधर्म भयो, म ठूलो युद्ध नगरी राज्यमा फर्किन्नँ"भनी कोशी नदीको तीरमा वराहरूप लिएर बस्नुभएका विष्णुको समीपमा गयो। त्यसले सिंहनाद गऱ्यो, विष्णुले शङ्ख बजाउनुभयो। युद्ध आरम्भ हुँदा परस्परमा एकले अर्कोलाई भित्तैमा पुऱ्याउने दुई वीरको बीचमा कठोर संवाद भयो। मूर्ख हिरण्याक्षको संहार गर्ने बेला भएको जानेर भगवान् वराहले हातमा चक्र लिएर प्रहार गरी हिरण्याक्षको टाउको छुट्याइदिनुभयो। दधीचिको महान् दानबाट देवताहरूले स्वर्ग प्राप्त गरे। (हिमवत्खण्ड, प्रकरण– २, अध्याय– ३१)

### ४.८ भगवती कामाख्याको महिमा

हिमालयपर्वतको आग्नेय दिशातर्फ रहेको डरलाग्दा गुफा र हिमचुचुराले सुहाएको कामपर्वतमा ब्रह्मपुत्र नद, कामधारा नदी र कामतीर्थ रहेको छ। कामधारा नदी ब्रह्मपुत्र नदमा एकाकार हुन्छिन्। त्यो कामतीर्थ हो र त्यो कामक्षेत्र पनि हो। यहाँ कामाख्या भगवती विराजमान हुनुहुन्छ। ब्रह्माले यस कामाचललाई बनाउनुभएको थियो। मनमा कुनै कामना राखेर उहाँले अत्यन्त सुन्दर, दिव्य र सम्पूर्ण प्राणीलाई हित गर्ने भगवान् शङ्करको पूजा गर्नुभएको थियो। यो पर्वत विभिन्न किसिमका धातुले खचिखचाउ भएको छ। विभिन्न रत्नका खानीहरूले उज्वल देखिन्छ। धातु र तेजले युक्त भएको यो पर्वत हिमालयको उच्च शिखर हो। त्यो पर्वत सुनौला वृक्षले भरिभराउ भएको छ। त्यस्तै सुनौला लहराहरू यहाँ छन्। झाडीहरूले यो पर्वत अत्यन्त सुशोभित छ।

विभिन्न किसिमका फुलेका फूलहरू र स्थलकमलले यो पर्वत सुशोभित भएको छ। मयूर, कोइली, भ्रमरा, चखेवा र सारौंले यस पर्वतलाई सुशोभित तुल्याएका छन्। यस किसिमको सुन्दर पर्वतराजलाई देखेर योगमाया त्यहाँ ओर्लनुभयो र पर्वतको शिखरमा आनन्दसित बस्नुभयो। महादेवी कामाचलको शिखरमा रहेको एकान्तस्थलमा सधैं आनन्द मनाएर बस्न थाल्नुभयो। यसै पर्वतको फेदीमा ब्रह्मपुत्र नद नजिकैबाट कलकल स्वरमा जलप्रवाहित गर्दै समुद्रतर्फ धाइरहन्छ। यो देवीको शिखर हो। इच्छाअनुसार रूप लिन सक्ने कामाख्या देवी त्यहाँ प्रत्यक्ष भएर विराजमान हुनुहुन्छ।

बुद्धि भएको मान्छेले एक पटक मात्र भए पनि त्यहाँ गएर पूजासामग्रीले भक्तिपूर्वक कामाख्यादेवीको पूजा गर्छ भने त्यसले करोडौं जन्ममा गरेको पापबाट तुरुन्तै छुट्कारा पाउँछ। आँखा, वचन, शरीर र मनले गरेका पापबाट पनि मुक्ति पाउँछ। धन, धान्य, पत्नी, पुत्र र सेवकले सहित भएर राजासमान यस संसारमा धेरै सुखभोग गर्न पाउँछ। कामाख्यादेवीको पूजा गर्ने मानिस मरेपछि सम्पूर्ण पितृ र कुलको उद्धार गरेर दिव्य यानमा सवार भई अत्यन्त सुखमय भगवान् शिवको परमधाममा प्राप्त हुन्छ।

त्यहाँ योगधारा नाम गरेकी उत्तम नदी छन्। त्यस्तै उत्तम ब्रह्मपुत्र नद पनि छ। ती दुईको सङ्गमस्थललाई योगतीर्थ भनिएको छ। त्यस ठाउँमा भस्मस्नान गरेर भगवान् रुद्रले स्वयं योगसाधना गर्नुभएको थियो। आफ्नै हातले अत्यन्त सुखदायक लिङ्ग उहाँले त्यहाँ स्थापना गर्नुभएको थियो। देवता, गन्धर्व, दैत्य, मानिस अथवा जोसुकै होस् त्यसले त्यहाँ गएर स्नान गऱ्यो भने कसैले प्राप्त गर्न नसकिने योग प्राप्त गरेर स्वर्ग आदि लोकमा जाने सौभाग्य पाउँछ।

कुनै मानिसले ब्रह्मपुत्र नदमा स्नान गर्दछ भने त्यसले अश्वमेध यज्ञ गरेको फल प्राप्त गर्दछ। स्नान गरेपछि त्यहाँ विराजमान हुनुभएकी भगवती पार्वतीलाई पूजा गर्दछ भने त्यो मानिस संसारमा फर्किएर आउँदैन। बुद्धि भएको मानिसले कामाचलको महिमामय तीर्थ योगकुण्डमा स्नान गर्नुपर्छ। त्यसो गऱ्यो भने त्यो योगीश्वर बन्दछ। अघि ब्रह्माले यस कुण्डको निर्माण गरेर योगसाधना गर्नुभएको थियो। त्यहाँ जप, होम अथवा दान गरिन्छ भने ती सम्पूर्ण गरिएका कर्म अक्षय हुन्छन्। स्नान गरेर जसले भगवती पार्वतीको पूजा गर्दछ, त्यसले मुक्ति पाउँछ। कामाख्यातीर्थमा स्नान गरेर भगवती पार्वतीका मन्त्रहरूको जप गरिन्छ भने मारण, मोहन, वशीकरण, उच्चाटन, स्तम्भन र आकर्षणसमेत सबै कर्ममा सिद्धि प्राप्त हुन्छ।

अघि मयनामक दानवले देवीको अनुकम्पाबाट आसुरी माया प्राप्त गरेको थियो। त्यसै मायाद्वारा त्यसले संसारलाई मोहित तुल्याएको थियो। पहिले कामाख्यादेवीको भक्ति गरेर प्राप्त गरेको मायाद्वारा शम्बरासुरले भगवान् हरिलाई पनि मोहित तुल्याएको थियो। ब्रह्मा, विष्णु र रुद्रले पनि ठूलो भक्ति गरेर ती जगन्मोहिनी मायाको आराधना गरी उत्तम वर प्राप्त गरेका थिए। योगकुण्डमा स्नान गरेर जसले देवीका मन्त्रहरू जप्छन् ती सबैले योगमायाका प्रसादले योगको सिद्धि पाउँछन्। ब्रह्माजीले भक्तिपूर्वक कठोर तप गरी योगमायाको आराधना गर्नुभयो र उहाँका कृपाले योगद्वारा त्यस कुण्डको निर्माण गर्नुभयो। योगद्वारा नै निर्माण गरिएको हुँदा त्यस कुण्डको नाम योगकुण्ड रह्यो। त्यस ठाउँमा गएर भक्तिपूर्वक योगेश्वरको पूजा गरिन्छ भने ज्ञान नभएको मूर्ख पनि योगीश्वर हुन्छ। सधैंभरि त्यस ठाउँमा बस्ने जति स्त्रीहरू छन्, ती सबै कामरूप योगिनी हुन्। यसमा शङ्का छैन। त्यस तीर्थमा भक्तिपूर्वक स्नान गरेर जसले महामाया भगवतीको दर्शन गर्छ, त्यसले फेरि यस संसारमा जन्म लिनुपर्दैन। योगी छ भने मुक्त हुन्छ। (हिमवत्खण्ड , प्रकरण- ३, अध्याय- ३३)

### ४.९ वराहक्षेत्र र भगवान् वराह

अघि ब्रह्माले सम्पूर्ण धातुले युक्त भएको एउटा पर्वत सृजना गरेर त्यसको टुपुमा एक योजन लामो उत्तम तलाउ बनाउनुभएको थियो। त्यो पर्वत सुवर्णमय शिखरले सम्पन्न, विभिन्न रत्नले सुशोभित, सम्पूर्ण धातुले युक्त र गुफा एवं खोला-खोल्साले सुहाएको थियो। त्यसमा विभिन्न किसिमका रुख र लहराहरू थिए। विभिन्न पुष्पहरूले त्यो पर्वत शोभायमान थियो। सुन, चाँदीजस्ता फूलहरू र घुमफिर गर्ने मयूर तथा भ्रमराहरूले सुहाएको त्यो पर्वत संसारमा सबैभन्दा

राम्रो र दिव्य थियो। पानी निस्कने झरनाहरूले गर्दा त्यो दोस्रो हिमालय जस्तो देखिन्थ्यो। त्यसै ठाउँमा अघि भगवान् विष्णुले पृथ्वीको उद्धारका लागि वराहको अवतार लिनुभयो। त्यसैले गर्दा यस पर्वतको नाम वराहपर्वत रहेको हो। वराहपर्वतको फेदीमा सम्पूर्ण पाप नाश गर्ने र पार्वतीको पसिनाबाट जन्मिएका सातवटा कौशिकी नदी मिलेर बगेका छन्। कोक नाम गरेको एउटा ठूलो पर्वत छ, त्यसैको गुफाबाट निस्किएर बग्ने पवित्र कोका नदी पनि त्यहीँ छन्। कोशी र कोका नदीको सङ्गममा उत्तम वराहतीर्थ छ। त्यस तीर्थले सबैका इच्छालाई परिपूर्ण तुल्याउँछ।

वराहतीर्थमा जुन मानिसले भक्तिपूर्वक विधिसित स्नान गर्छ, त्यो सम्पूर्ण पापबाट मुक्त भएर विष्णुलोक जान्छ। जसले पितृलोकका निमित्त सधैँ त्यस नदीको किनारमा श्राद्ध गर्छ, त्यो पितृ र देवताहरूलाई खुसी तुल्याएर पितृलोक जान्छ। त्यहाँ राम्रा–नराम्रा जुन काम गरिन्छन्, ती सबै अक्षय्य हुन्छन्। कौशिकी र कोकाको सङ्गमबाट चारै दिशातिर तीन योजनसम्मको भू–भागलाई वराहक्षेत्र भनिएको छ। त्यो मोक्षदायक क्षेत्र हो। यसका बीचमा जति पनि जलका धाराहरू पैदा भएका छन्, ती सबै उत्तम तीर्थ हुन्। तिनीहरूमा स्नान गरिन्छ भने स्वर्ग प्राप्त हुन्छ। मानिसले कोशीमा स्नान गरेर कोकापर्वतमा आरोहण गर्‍यो भने पाइलैपिच्छे अश्वमेधयज्ञ गरेको फलभन्दा पनि बढी फल पाउँछ।

वराहपर्वतको शिखरमा ब्रह्मह्रद छ। सबै तीर्थमा उत्तम तीर्थ मानिएको यो तलाउ अघि ब्रह्माजीले बनाउनुभएको थियो। ब्रह्माजीले बनाएको त्यस उत्तम तीर्थमा जुन मानिसले स्नान गर्छ, त्यसले ब्रह्मत्व प्राप्त गर्छ। त्यहाँ स्नान गरेर जसले भक्तिपूर्वक अव्यय विष्णुको अवतार वराहको पूजा गर्छन्, तिनीहरूले मोहरूपी काँचुलीलाई फ्याँकेर ज्ञानरूपी चोलो लगाई दश कुलअघि र दश कुलपछिका पितृवंश र मातृवंशको उद्धार गर्दछन्। त्यसपछि तिनीहरू विष्णुलोक जान्छन्। त्यस अवसरमा विष्णुका सेविकाहरूले तिनीहरूको सेवा गरिरहेका हुन्छन्, चमर हल्लाइरहेका हुन्छन्, गीत गाउँदै बाजा बजाइरहेका हुन्छन् र त्यहाँ ठूलो उत्सव हुन्छ। अप्सराले तिनीहरूको सेवा गरिरहेका हुन्छन्। दिव्य सङ्गीत, नृत्य तथा घुँगुराको आवाज घन्किरहेको हुन्छ। ज्ञान तथा धर्म नभएका धेरै मूर्खहरू पनि विष्णुका अवतार भगवान् वराहको दर्शनले मात्रै मुक्त भएका छन्।

वराह भगवान् रहनुभएका शिखरको उत्तरपट्टिको शिखरमा स्वयं वराहरूपधारी विष्णुले स्वयम्भू वराहेश्वर शिवलिङ्गको भक्तिपूर्वक आराधना गर्नुभएको थियो। त्यसैले त्यस लिङ्गलाई वराहेश्वर भनिएको छ। भगवान् विष्णुले पृथ्वीको उद्धारका निमित्त वराहेश्वरको आराधना गर्नुभएको थियो। उहाँबाटै वर पाएर अघि विष्णुले पृथ्वीको उद्धार गर्नुभयो। जतिसुकै पापी भए पनि उहाँको दर्शनमात्र कसैले गर्दछ भने त्यसका सम्पूर्ण पापहरू नष्ट हुन्छन् र त्यो रुद्रलोक जान्छ। जसले वराहेश्वर लिङ्गलाई उहाँकै मन्त्रद्वारा भक्तिपूर्वक पूजा गर्छ, त्यसले फेरि यस पृथ्वीमा जन्म लिनुपर्दैन। त्यो उत्तम शिवलोक जान्छ। अघि कुनै समयमा गङ्गा र यमुनाका बीचमा रहेको ब्रह्मपुरीमा बस्ने विष्णु शर्मानामक ब्राह्मण यसै वराहतीर्थमा आएका थिए। उनले त्यहाँका आदिवासीहरूको भयले भिल्लुनामक आदिवासीकी सुवदनी नामकी छोरीसँग विवाह गरे। सङ्गतको दोषले गर्दा ती ब्राह्मण पनि सर्वाहारा बने। शिकार खेल्ने वृत्ति अपनाएर केही वर्ष उनले बिताए। कार्तिक महिनाको पूर्णिमाको रात ती ब्राह्मण शिकार खेल्दाखेल्दै थाकेर आनन्दसित सुतेका थिए। ब्राह्ममुहूर्तमा उनले मादल, ताल, बाजा र गीतबाट उत्पन्न मीठो स्वर भएका नानाथरी शब्द सुने। त्यसपछि ब्राह्मणले कानलाई अत्यन्त आनन्द दिने विभिन्न बाजाबाट पैदा भएको कल्याणकारी त्यो अद्भुत शब्द सुनेर आफ्नी प्रियतमा सुवदनीसँग सोधे– हे प्रिया ! हे सुवदनी ! आज राति के आश्चर्य भयो ? विभिन्न बाजाबाट निस्किएको ध्वनि र आनन्ददायक गीत सुनियो। हे प्रिया ! दमाहा, कर्णाल, मादल, घुँघुरा आदि बाजाको मिश्रण भएको शब्द सुनियो। हे प्रिया ! यो पहाडको पूर्वतिर कोलाहलले युक्त ठूलो शब्द ज्यादै आश्चर्यजनक छ। त्यो जे हो, भन। उनले भनिन्– प्रत्येक महिना द्वादशीका दिन ब्राह्ममुहूर्तमा सधैँ अत्यन्त आश्चर्यजनक कोलाहलले युक्त यो आवाज आउँछ। त्यहाँ सबै अप्सराहरू गीत गाउँदै, बाजा बजाउँदै वराह भगवान्को अगाडि खूबसित नाच्छन्, पुष्पवृष्टि हुन्छ। त्यो डरलाग्दो पर्वतका शिखरमा जानुहुँदैन। त्यो हेर्ने कसको सामर्थ्य छ ? जाने मान्छे त्यहीँ बिलाउँछ। जुन मासिन पर्वतको त्यस शिखरमा गए ती मानिस फर्किएका छैनन्। हे प्रिय ! यसरी नै धेरै मानिसहरू त्यहाँ गएर विलीन भएका छन्। यदि बाँच्ने इच्छा छ भने हजुर पनि त्यहाँ नजानुहोस्। पत्नीको यो कुरा सुनेर ती ब्राह्मणले अविनाशी विष्णुका अवतार वराहलाई पर्वतशिखरमा गएर दर्शन गर्ने विचार गरे।

अर्को दिन बिहान उठेर ती ब्राह्मण कौशिकीमा गए, त्यहाँ विधिपूर्वक स्नान गरे र ऋषि, देवता एवं पितृहरूलाई तर्पण दिए। त्यसपछि 'ॐ नमस्ते वराहाय' अर्थात् वराह भगवान्लाई नमस्कार छ भन्ने यो मन्त्र पाइलैपिच्छे पढ्दै प्रसन्न भएर ती ब्राह्मणले वराहपर्वतमा आरोहण गरे। त्यहाँ उनले सम्पूर्ण देवताहरूका स्वरूप बँदेलहरूले घेरिएका अव्यय वराह भगवान्लाई देखे र सबै तीर्थभन्दा उत्तम तीर्थका रूपमा रहेको वराहकुण्डलाई देखे। ती ब्राह्मणले सर्वप्रथम त्यहाँ स्नान गरे अनि भगवान्को मन्दिरमा गए।

ती ब्राह्मणले देवता र अप्सराहरूको नाच–गान आदिले सुहाएको अत्यन्त आश्चर्यजनक वराहको रूप लिने भगवान् विष्णुको दर्शन गरे। उनले वराहरूपधारी भगवान् विष्णुको भक्तिपूर्वक परिक्रमा गरेर आठै अङ्गले नमस्कार गर्दै पूजा गरे। वराह भगवान्ले भन्नुभयो – हे भक्त ! तिम्रो भक्तिबाट म प्रसन्न भएँ। तिमीलाई जे इच्छा छ, त्यो वर माग। अज्ञानी मूर्खहरू पनि मेरो दर्शन गर्नासाथ ममा लीन हुन्छन्। हे बाबु ! सबै वरभन्दा उत्तम वर म तिमीलाई दिन्छु। तिमी एकहत्तर युगसम्म इन्द्र बन। त्यो समय सकिएपछि तिमीले मोक्ष पाउनेछौ। हे भक्त ! ममा नै लीन भएर मेरो शरीर बन्नेछौ। यसमा सन्देह छैन।

भगवान्ले यसो भन्नासाथ विष्णुकन्याले युक्त भएको र विभिन्न पार्षदहरूले सुसज्जित भएको विमान आकाशबाट त्यहाँ ओर्लियो। शङ्ख, चक्र, गदा र पद्म हातमा लिएका एवं कौस्तुभमणि लगाएका ती ब्राह्मणलाई विष्णुका गणहरूले दोस्रो विष्णुलाई जस्तै गरी विमानमा चढाए। आकाशमा नगराहरू बजे, पुष्पवृष्टि भयो, साधुवाद दिँदै सिद्ध र गन्धर्वराजहरूले जयगान गाए। त्यसपछि गणहरूले उनलाई सधैँ स्थायी रहने विष्णुलोकमा लगे। समय बित्दै गएपछि ती ब्राह्मण एकहत्तर युगसम्म इन्द्र बने। (हिमवतखण्ड, प्रकरण– ३, अध्याय– ३४)

### ४.१० भगवती गौरीको जन्म, तपस्या र दैत्यसंहार

अघि दक्षसँग रिसाएकी सती देवीले आफ्नो शरीर त्याग गरेर फेरि आफूलाई मेनाको गर्भबाट अवतीर्ण गराउनुभएको थियो। त्यसपछि हिमालय आफूले चाहेजस्ती सबैभन्दा सुन्दरी दिव्य छोरीलाई प्राप्त गरेर अत्यन्त आनन्दित भए। अनेक रत्नहरू जडिएको, दिव्य हार आफ्ना गलाबाट फिकेर प्रसन्न हुँदै सुत्केरी भएकी ती मेनालाई उनले तत्काल पहिराइदिए। त्यसपछि हिमालयले सप्तर्षिहरूलाई बोलाएर भने– हे ऋषि हो ! मेरो कुलमा पैदा भएकी रत्नसमान छोरीको संस्कार गरिदिनुहोस्। सप्तर्षिहरूले पनि हमिालयको इच्छानुसार कन्याको जातकर्मादि संस्कार गरिदिए। हिमालयले साह्रै खुसी भएर ब्राह्मणहरूलाई अनेक वस्त्र, रत्न र सुवर्णहरू दान दिए। विभिन्न अलङ्कारले विभूषित पारेर दुहुना बाच्छा–बाच्छीले युक्त भएका करोडौँ कैला गाईहरू ब्राह्मणहरूलाई दान दिए।

त्यसपछि सप्तर्षिहरूले ती बालिकालाई सुहाउने किसिमले नाम राखे। सम्पूर्ण लक्षणले युक्त भएकी हिमालय पर्वतकी पुत्रीको नाम पार्वती रह्यो। यही नामले यी तीनै लोकमा प्रसिद्ध भइन्। यस्तो नाम राखेर ऋषिहरू प्रसन्न हुँदै भगवान् विष्णुको वासस्थान बद्रिकारण्य (बदरी आश्रम) मा गए। तीनै लोकका स्त्रीहरूमा सबैभन्दा सुन्दरी भएकी ती पूज्य पार्वती दिनानुदिन बढ्दै गएर पाँच वर्षकी भइन्, बालुवा र भकुण्डो खेलेर रमाउन थालिन्। आफ्ना बाबु–आमा र गुरुजनप्रति श्रद्धालु पार्वती विद्यामा पारङ्गत विदुषी बनिन्।

कुनै समयमा गौरी आमा–बाबुको सल्लाहअनुसार त्यहाँ तपस्या गरिरहनुभएका महादेवको सेवा गर्न थाल्नुभयो। तपस्यामा बसेका रुद्रले देवतासँग रिसाउँदै जब कामदेवलाई भस्म गर्नुभयो त्यो दृश्य पार्वतीले आफैँ देख्नुभयो। त्यसपछि भगवान् शङ्कर मुञ्जाचल पर्वत छोडेर कैलासपर्वतमा जानुभयो। अनि पूज्य पार्वती शिवजीबाट निराश हुनुभयो। तपस्याविना शिवजीलाई प्राप्त गर्न सकिन्न भन्ने धारणा लिएर अत्यन्त बुद्धिमती पार्वतीले तपस्या गर्ने विचार गर्नुभयो। कुनै दिन उहाँले आफ्नी आमासित साह्रै कठिन उपवास व्रत गर्ने अनुमति माग्नुभयो। पार्वतीले भन्नुभयो – हे आमा ! म निराहार बसेर व्रत गर्न चाहन्छु। मलाई तुरुन्त आज्ञा दिनुहोस् किनभने त्यस व्रतबाट फल प्राप्त हुन्छ। अघि मैले महादेवले कठिन तपस्या गरेको देखेकी थिएँ। मलाई पनि आफ्नो कामना पूर्ण गरिदिने तपस्याको इच्छा छ। तपस्याबाट नै आफ्नो इच्छा पूर्ण हुन्छ, तपस्याबाट नै उत्कृष्ट राज्य लाभ हुन्छ। भुक्ति–मुक्ति र ऐश्वर्य पनि तपस्याबाट नै प्राप्त हुन्छ। त्यसैले तपस्या सबैभन्दा ठूलो छ।

मेना पाँच वर्षकी आफ्नी छोरीको यस्तो कठोर निर्णय सुनेर आश्चर्य मान्दै केही डराइन्। त्यसपछि मेनाले साह्रै मीठो बोल्ने आफ्नी प्यारी छोरीलाई महजस्तो मीठो बोली बोलेर धेरै सम्झाइन्। छोरीको मोहमा डुबेकी ती मेनाले आफ्नी छोरीलाई तुरुन्त अङ्कमाल गरेर प्रेमले गद्‌गद हुँदै मीठो बोलीले भनिन्– हे छोरी ! अहिले तिमी धर्म गर्न सक्दिनौ, व्रत नबस, तिम्रो उमेर भर्खर पाँच वर्ष भएको छ। कोमल शरीरले भोक र प्यास कसरी सहन सक्छ ?

हे पुत्री ! यो पाञ्चभौतिक शरीरका लागि तपस्या अत्यन्तै कठिन हुन्छ। त्यसमा पनि कठोर उपवास व्रत गरेर त्यसलाई शरीरले कसरी सहन सक्छ ? मलाई भन। जुन ईश्वरैले बाँधिदिएको तपश्चर्या वा धर्मको स्थिति छ, त्यसको दुःख योनिबाट पैदा नभएको व्यक्तिले नै सहन सक्छ। उमाले भन्नुभयो– हे आमा ! यस्तो अप्रिय कुरा नगर्नुहोस्। जो धर्ममा लागेका छन्, तिनीहरूलाई शरीरको वास्ता हुँदैन। विषयमा आसक्त नभएका मानिसहरूको कल्याणका लागि तपस्या र व्रतको महत्व छ। व्रत तथा धर्मको निषेध गर्ने, नराम्रो आचरण लिने र धर्ममा पराङ्मुख भएका मानिसहरूलाई नै ठूला–ठूला अक्षय नरकहरूको व्यवस्था गरिएको छ। तपस्या र धर्ममा लागेका मानिसहरूको शरीर स्थिर हुन्छ। तपस्या गर्ने मानिसले जसको तपस्या गर्छ,

ती प्रभुलाई उसले आफ्नो वशमा ल्याउन सक्दछ। मेरो हृदयमा भगवान् शङ्करका चरणकमलको सेवा गर्ने इच्छा छ। मृत्युञ्जय अर्थात् मृत्युलाई जितेर वशमा राख्ने भगवान् शिवले अवश्य नै मेरो इच्छा पूर्ण गर्नुहुनेछ।

यति भनेर पार्वती व्रत बस्नका लागि अघिल्तिर रहेको अत्यन्त शीतल नीलकण्ठ पर्वतको शिखरमा जानुभयो। जया, विजया, धर्मशीला र त्यस्तै अरू सँगिनीहरूका साथमा रहेकी र आफू शिवस्वरूप बनेकी पार्वतीले तीर्थमा स्नान गर्नुभयो। देवता र कुनै पनि प्राणी नपुग्ने एकान्तस्थलमा रहेको सबैभन्दा अग्लो शिखरमा आरोहण गरी आफ्ना सखीहरूलाई पनि छलेर शिवजीको आराधनामा संलग्न भएकी पार्वती देवीले अत्यन्त कठिन खालका विभिन्न व्रतहरू गर्नुभयो र नीलकण्ठ पर्वतको आग्नेयपट्टिको अग्लो शिखरमा बसेर तपस्या गर्नुभयो। त्यसैले त्यो पर्वत गौरीपर्वतको नामले प्रसिद्ध भयो। पहिले एक छाक बेलुका मात्र खाएर पार्वतीले व्रत गर्नुभयो। उहाँले खालि पर्व-पर्वमा मात्रै फलफूल खाएर एक वर्षसम्म तपस्या गर्नुभयो। पार्वतीले सुकेका पात खाएर कठोर चान्द्रायण व्रत गर्नुभयो। दूबोमात्र खाएर बस्नुभयो र जलमात्र खानुभयो।

यस्तै किसिमले तीन वर्षसम्म कठोर व्रत गर्नुभयो। त्यसपछि चौथो र पाँचौं वर्षमा हावा खाएर कठोरभन्दा पनि कठोर कृच्छ्रचान्द्रायण, अतिकृच्छ्रचान्द्रायण जस्ता व्रत गर्नुभयो। शिवजीलाई आफ्नो आत्मामा राखेर पार्वतीले धुवाँमात्रै खाएर व्रत गर्नुभयो। त्यसबेला उहाँले रुखमा गोडा बाँधेर उँधोमुन्टो लगाउनुभएको थियो। देवताहरूले जुन कठोर व्रत एक लाख वर्षमा पूर्ण गरेको थिए त्यो व्रत पार्वतीले पाँचै वर्षमा राम्रोसित पूर्ण गर्नुभयो। दुनिया र आमा तथा बाबुलाई शक्तिले मोहित तुल्याउँदै पार्वतीले पाँच वर्षलाई पनि पाँच दिनजस्तै ठान्नुभयो। यसरी दश वर्षसम्म पार्वतीले कठोर तपस्या र व्रत समाप्त गरेर ब्राह्मणहरूलाई दक्षिणा दिनुभयो। ऋषिहरूलाई दिनुपर्ने कुरा दिएर आफ्ना सँगिनीहरूका साथ खुसी हुँदै पार्वती घर फर्कनुभयो र आफ्ना पूजनीय बाबु-आमालाई ढोग्नुभयो। बाबु-आमाले पनि पार्वतीलाई 'आफ्नो भावनामा अचल भएस्' भनेर आशीर्वाद दिए। फेरि पनि गौरीले सबै महिनामा निरन्तर विभिन्न किसिमका व्रतहरू गर्नुभयो। उहाँले पूरै वैशाखदेखि चैतसम्म प्रतिपदादेखि औंसी अथवा पूर्णिमासम्म र आइतवारदेखि शनिवारसम्म गरिने व्रत एवं उपवासका साथ भगवान् शिवको लिङ्गस्थापना गरी मासविधिअनुसार दान, दक्षिणाद्वारा ब्राह्मणहरूलाई सन्तुष्ट तुल्याउनुभयो। नारीहरूले कसरी व्रतद्वारा आफूलाई पवित्र तुल्याई सन्तान र परिवारको कल्याण गर्नुपर्छ भन्ने कुरासमेत भगवती गौरीले आफ्नो चरित्रबाट शिक्षा दिनुभयो।

भगवती गौरीको सबै लोकमा शान्तिस्थापना गर्ने र प्रत्येक प्राणीको कल्याण गर्ने व्रत, उपवास, तपस्या एवं शिवाराधनाबाट प्रत्येक नारीले शिक्षा लिनुपर्दछ भन्ने कुरा बताउँदै जलदेवीले भनेकी थिइन्- क्षमा, सत्य, दया, दान, शौच, इन्द्रियनिग्रह, शिवपूजा, अग्नि, होम र सन्तोष सबै धर्ममा नभई नहुने विषय हुन्। श्रद्धाले नै तीर्थमा गइन्छ, श्रद्धाले नै जलमा स्नान गरिन्छ, श्रद्धापूर्वक गरेको कर्म नै धर्म मानिन्छ। श्रद्धाले नै दान दिइन्छ, श्रद्धाले नै अग्निमा होम गरिन्छ, श्रद्धाले नै मन्त्र जपिन्छ, श्रद्धाले नै शिवजीको ध्यान गरिन्छ। श्रद्धाले नै धर्मको प्राप्ति हुन्छ, श्रद्धाबाटै त्यसको फल पाइन्छ, रिसाएर अथवा श्रद्धा नभईकन मानिसले जुन काम गर्छ, त्यो काम खरानीमा होम गरेजस्तो हुन्छ। धर्मजस्तो ठूलो मन्त्र छैन, दानजस्तो ठूलो गति छैन, रुद्रजस्तो अर्को देवता छैन र मोक्षजस्तो अर्को सुख छैन। स्त्रीजातिहरूको हितका निमित्त भगवती पार्वतीले गर्नुभएअनुसार तिथि एवं पर्वमा यस्ता व्रत गरेमा परम धर्मको फल प्राप्त हुन्छ र यसैबाट मोक्षरूपी फल पनि प्राप्त हुन्छ।

यसरी उपासना, आराधना र उपवासबाट परमशक्ति प्राप्त गर्नुभएकी भगवती गौरीले लोकमा अशान्ति फैलाउने, धर्मको जरो काट्ने र सनातन मर्यादामा खलल पुऱ्याउने, शुम्भ, निशुम्भ, चण्ड, मुण्ड, रक्तबीज आदि दैत्यहरूलाई संहार गरेर लोककल्याण गर्नुभएको थियो। भगवती पार्वतीको यो तपस्याले सम्पूर्ण नारी जगत्‌लाई आदर्शको, नैतिकताको, सत्चरित्रको पतिव्रताधर्मको र परमत्यागको महिमा बोध गराउँदै उनीहरूको जीवनलाई सफल, सन्तुष्ट र ऊर्ध्वगामी बनाउँछ। (हिमवतखण्ड, प्रकरण-३, अध्याय- ३६ देखि ३९)

### ४.११ पार्वतीको तपस्याको क्रममा कोशी नदीको प्रादुर्भाव

ज्येष्ठानक्षत्रले युक्त भएको जेठ महिनाको शुक्लपक्षको तृतीया तिथिमा गरिने जुन ठूलो व्रत छ त्यो व्रत महामना पार्वतीले लिनुभएको थियो। नीलकण्ठ सरोवरको नजिकै पूर्व र उत्तर दिशामा चारवटा उत्रैउत्रा कुण्ड बनाई पार्वतीले पूर्वकुण्डमा तेजिलो बत्ती बाल्नुभयो, दक्षिणकुण्डमा खुसी हुँदै आगो बाल्नुभयो, उत्तरकुण्डमा गीत गाउँदै आगो बाल्नुभयो, पश्चिमतिरको कुण्डमा गीत गाउँदै पानी भर्नुभयो। ती अग्निहरूको माझमा सँगिनीहरूका साथ पूर्व फर्किएर बस्नुभयो। त्यसपछि उहाँले गीत गाउँदै माथितिर रहेका सूर्यलाई हेर्नुभयो।

त्यसपछि उहाँले गीत गाउँदै विधिअनुसार पञ्चोपचार विधिले बत्ती, अग्नि, पानी र सूर्यको क्रमैले पूजा गर्नुभयो। पार्वतीले मुख केही उँचो गर्नुभयो, योगासनमा बसेर आँखा नझिम्क्याई नाकको अगाडि हेर्नुभयो। त्यसपछि उहाँले हृदयकमलमा

रहेका, देवताहरूद्वारा ध्यान गरिएका, अत्यन्त उज्वल, निर्विकार तथा निरञ्जन आत्मस्वरूपको ध्यान गर्नुभयो । आफैं ज्योतिस्वरूप भएकी पार्वतीले अत्यन्त कठोर तेज भएका सूर्यको तातो तेजलाई सहनुभयो। पार्वतीले सूर्योदयदेखि लिएर चौथो प्रहरसम्म तीन प्रहर, सही नसक्ने खालको कठोर तपस्या गर्नुभयो । यसरी चार वर्षसम्म अम्बिकाले व्रत गरेर पाँचौं वर्षमा पनि यस्तै व्रत गरी अन्त्यमा उद्यापन गर्ने विचार गर्नुभयो। जुन नारीले यस्तो व्रत गर्छिन् तिनले दश प्रकारका ऐश्वर्य, उत्तम पतिको साथै सौभाग्य, धन, धान्य, सुख आदि इच्छा लागेको सबै वस्तु पाउँछिन्। उनले छोरा, नाति, समृद्धि र इच्छा लागेका वस्तुहरू पाउँछिन्। उत्तम कुलमा उनको जन्म हुन्छ। पार्वतीले यसरी तपस्या गर्दै जाँदा सूर्यको तातो र आगोको तातोले गर्दा शिरदेखि पाउसम्मका अङ्गबाट पसिनाका विन्दुहरू पैदा भए। त्यसपछि पार्वतीले उठेर ऋषिलाई गोदान दिनुभयो।

हेमकूट नाम गरेको पर्वतमा पहिले उहाँले कुशिक नाम गरेका तपस्वीलाई गोदान दिनुभयो । उहाँका गोडाबाट पसिनाका विन्दुहरू झरे। त्यहाँबाट हेमकूट पर्वतको तपस्थलीमा श्रेष्ठ नदी पैदा भइन् र पवित्र निर्मल जलले युक्त भएर बग्न थालिन्। तिनलाई देखेर कुशिक मुनि अत्यन्त खुसी भए। त्यसपछि विधिपूर्वक भक्तिले त्यस नदीमा स्नान गरे। अत्यन्त वृद्ध भए तापनि ती ऋषि रूपवान् भए, तन्नेरी बने। सबै मायाजालबाट मुक्त भएका ती ऋषिलाई पूर्वजन्मको सम्झना भयो। आफू अचानक युवक भएको देखेर कुशिक ऋषि अत्यन्त हर्षित भए। उनले गौरीको दायाँ पाउबाट निस्किएको नदीलाई भक्तिपूर्वक शिर झुकाएर स्तुति गरे।

महर्षि कुशिकको शरीर, मन र वचनबाट पैदा भएको स्तुति सुनेर ऋषिप्रति पार्वती अत्यन्त प्रसन्न हुनुभयो। त्यसपछि जलको बीचबाट हर्षित हुँदै ऋषिलाई वरदान दिनका निमित्त पार्वती अर्को रूप लिएर प्रकट हुनुभयो। आठ हात, हरियो वर्ण र सबै गहनाले सुशोभित भएको दोस्रो रूप लिएर प्रकट भएकी जलदेवीले ऋषिलाई भन्नुभयो – तिम्रो इच्छा पूर्ण गर्ने शक्ति भएकी मसित वर माग। तिमी जे चाहन्छौ, त्यो वर दिन्छु भन्नुभयो। हे मुनि ! मलाई नदीको मूर्ति मात्र नठान, किन्तु संसारको कारण अर्थात् सृष्टि, स्थिति र प्रलय गर्ने तथा तिमीलाई वर दिन सक्ने बुझ।

कुशिकले भने – हे आद्यादेवी ! व्यक्त तथा अव्यक्त स्वरूप भएकी महादेवी ! हजुरलाई बारम्बार नमस्कार छ। सृष्टि, स्थिति र विनाश गर्ने जलमूर्तिलाई नमस्कार छ। हे देवी ! आज मेरो तपस्यारूपी वृक्ष फलेको छ। मेरा सबै देवताहरू र पितृहरू पनि तृप्त भएका छन्। म अनाथको अहोभाग्य रहेछ किनभने तपाईंले जलको माझबाट निकालेर आफ्नो शरीर मलाई देखाइदिनुभयो। यसैले मेरो कुशिकको नामबाट नै हजुरको नाम संसारमा प्रसिद्ध होओस्, यही नै म वर माग्छु र अन्त्यमा पनि हजुरकै पाउमा लीन हुन पाऊँ भन्ने वर माग्छु।

जलदेवीले भन्नुभयो – हे बाबु ! तिमीले मसित इच्छा लागेको जुन वर माग्यौ, आजदेखि तिमीले भनेझैं होस्। हे कुशिक ! तिमीले प्रसन्न भएर मेरो आराधना गरेका थियौ, त्यसैले गर्दा हे छोरा ! आजदेखि म कौशिकी नामले प्रसिद्ध हुन्छ। त्यसपछि चर तथा अचर प्राणीहरूले कौशिकी भनेर भन्नेछन्। म सातवटा धारा भएर बग्नेछु र तिनमा छवटा धारा बराबरका हुनेछन्। जहाँ जहाँ मेरा पसिनाका थोपाहरू खस्नेछन्, त्यही त्यही ठाउँमा ती पसिनाका थोपा नदी भएर स्वच्छन्द रूपमा बग्नेछन्। यति भनेर जलदेवी कुशिक मुनिलाई वरदान दिएर त्यसै जलमा अन्तर्धान हुनुभयो।

त्यसपछि कुशिक मुनिले सनत्कुमार बसेको हिमालयको रत्नशिखरमा भगवती पार्वतीको दर्शन पाए। सनत्कुमार पनि गौरीका अनुयायी बने। पार्वतीले खुसी भएर ती ऋषि र त्यस्तै पछि लाग्ने अरू ऋषिको पनि पूजा, सत्कार गरेर दान दिनुभयो। पार्वतीको चिउँडोबाट निर्मल खालको पसिना बग्यो। त्यसै ठाउँबाट तरङ्गले युक्त भएकी नदी बगिन्। तामाको जस्तो वर्ण भएकी ती नदीलाई देखेर मुनिले त्यहाँ विधिपूर्वक स्नान गरे। त्यसपछि वचन, शरीर र मनले प्रसन्न भएर पार्वतीको स्तुति गरे।

पार्वती फेरि हिरण्यशेखर पर्वतमा जानुभयो। सनातन नाम गरेका ऋषि उनको पछि लाग्दै गए र त्यहाँ तपस्या गरे। व्रतमा बसेकी पार्वतीले ती ऋषिलाई पूजा गरी दानदक्षिणा दिनुभयो। पार्वतीको ओठको छेउबाट पर्वतमा पसिना खस्यो, तुरुन्तै पहेँलो वर्णकी सुनकोशी नदी बनेर पहाडमा बगिन्। ऋषिले बारम्बार स्तुति गर्नुभयो। फेरि पार्वती अत्यन्त उच्च शिखर भएको पर्वतमा जानुभयो। सनन्दन नामक तपस्वी उहाँको पछि लागे। गौरीले विधिपूर्वक उनको सत्कार गरी दानदक्षिणा दिनुभयो। फेरि पार्वतीको आँखाको कोशबाट अत्यन्त निर्मल पसिनाको थोपा खस्यो। त्यो निर्मल थोपा जलका रूपमा परिणत भई नदी बनेर बग्यो। त्यहाँ भक्तिपूर्वक सनन्दन मुनिले स्नान गरे र स्तुति गरे।

त्यसपछि पार्वती चाँदीको शिखर भएको पर्वतमा जानुभयो। सनक नाम गरेका तपस्वी उहाँको पछि लागे। पार्वतीले उनलाई भक्तिपूर्वक पूजा गरेर धेरै दान दिनुभयो। उहाँको गलाबाट रातो वर्ण भएको निर्मल पसिनाको थोपा चुहियो। त्यसै पसिनाबाट धेरै तरङ्गले युक्त भएको नदी बनेर बग्यो। ऋषिले त्यस नदीमा तीनै किसिमका भक्ति गरेर प्रसन्न हुँदै स्नान गरे

र स्तुति गरे। अनि पार्वती धातुको शिखर भएको पर्वतमा जानुभयो। सनक नाम गरेका तपस्वी उहाँको पछि लागे। पार्वतीले भक्तिपूर्वक उनको पूजा गरेर धेरै दान दिनुभयो। त्यहाँ पार्वतीको केशबाट निर्मल पसिना झऱ्यो। त्यो पसिना तरङ्गयुक्त नदी भएर तुरुन्त बग्यो। त्यस नदीमा ऋषिले भक्तिपूर्वक स्नान गरे र बारम्बार स्तुति गरे। अनि पार्वती कुशिक ऋषिलाई साथमा लिएर ब्रह्मर्षि भएको कुशैकुशले भरिएको शिखरमा जानुभयो। त्यहाँ उहाँले कुशिक मुनिलाई पूजा गरेर भक्तिपूर्वक दान दिनुभयो। उहाँको निधारबाट पसिनाको निर्मल विन्दु झऱ्यो। त्यही पसिना निर्मल जल बनेर नदी भयो। ऋषिले भक्तिपूर्वक त्यहाँ स्नान गरे। तीनै किसिमका भक्तिले प्रसन्न हुँदै उनले स्तुति गरे। अनि पार्वती कोशीभित्रै दुनियाँलाई वर दिन र सबै प्राणीको हितका लागि प्रकट हुनुभयो।

देवीले भन्नुभयो– हे कुशिकमुनि ! लोकको हितका निमित्त तिमीलाई वर दिन्छु। तिम्रो नामबाट मेरा सात धाराहरू मूर्त रूप भएर बग्नेछन्। मेरा सात धाराका नाम शुभस्रवा, पापघ्नी, भद्रावती, महाप्रभा, वरदा, दुःखघ्नी र सत्यवाहिनी हुनेछन्। मलाई बारम्बार प्राणीहरूले सप्तकोशी भन्नेछन्। म सात धाराकी हुनेछु। ती सबै मेरा विभूति हुनेछन्। हे विप्रवर ! शुभस्रवा दुर्गारूपा हुन्, पापघ्नी चण्डीरूपा हुन्, भद्रावती शिवदूतीस्वरूपा हुन्, महाप्रभा कपर्दिनीरूपा हुन्, वरदा वाराहीरूपा हुन्, दुःखघ्नी शचीरूपा हुन् र सत्यवाहिनी गौरीरूपा हुन्। यसैगरी सप्तकोशीका अर्काथरी सात नाम पनि रहेका छन्– हरित्कान्ति, पीतवाहा, ताम्रकान्ति, दुग्धकान्ति, अमृतवाहिनी, कृष्णकान्ति र व्योमधारा।

अब छुट्टाछुट्टै कोशीमा स्नान गर्ने तिथि र तिनको फल बताइन्छ। सबै फल पाउनका लागि हरित्कान्ति नदी (इन्द्रावती) को प्यारो चतुर्दशी तिथिमा त्यहाँ स्नान गर्नुपर्छ। मुक्तिको इच्छा गर्ने मानिसले विधिपूर्वक भक्ति गरी पीतवाहा नदी (सुनकोशी) को प्यारो तिथि अमावास्याका दिन स्नान गर्नुपर्छ। सबै सौभाग्य पाउनका लागि हर्षसाथ भक्ति गरेर ताम्रकान्ति नदी (तामाकोशी) को प्रिय तिथि अष्टमीका दिन स्नान गर्नुपर्छ। राम्रो हुन र स्वर्गप्राप्तिका लागि भक्तिपूर्वक दुग्धकान्ति नदी (दुधकोशी) को प्यारो तिथि नवमीका दिन स्नान गर्नुपर्छ। सुखसित वैकुण्ठ जानको लागि अमृतवाहिनी नदी (अरुणकोशी)को प्यारो तिथि एकादशीका दिन स्नान गर्नुपर्छ। स्वर्ग र चक्रवर्ती राजा हुने फलप्राप्तिका लागि कृष्णकान्ति नदी (तमोरकोशी) को प्यारो तिथि द्वादशीका दिन भक्तिपूर्वक स्नान गर्नुपर्छ। स्वर्ग, मोक्ष र सबै प्रकारका सुख प्राप्तिका निमित्त व्योमधारा नदी (वरुणकोशी) को प्यारो तिथि पूर्णिमाका दिन त्यहाँ स्नान गर्नुपर्छ। यसरी माथि भनिए अनुसार पहिले तिथिको विचार गरेर सबै कुरा पूर्ण गराउन चाहने धीर पुरुषले ती–ती नदीमा गएर स्नान गर्नुपर्छ। यिनै नदीहरू अहिले इन्द्रावती, सुनकोशी, तामाकोशी, दूधकोशी, अरूणकोशी, तमोरकोशी र वरुणकोशीका रूपमा लोकमा प्रसिद्ध छन्।

देवीले भन्नुभयो– हे कुशिक मुनि ! आजदेखि तिमी धेरै कालसम्म चिरञ्जीवी बन। कौशिकी नदीको तीरमा आदिलिङ्ग हिमस्वरूप भएर रहनेछ। तिमी त्यहाँ तुरुन्त गएर त्यस शिवलिङ्गको विधिपूर्वक पूजा गर। कलिमा गुप्त स्वरूपले रहेको त्यस लिङ्गलाई कहिल्यै छाड्नुहुँदैन। हे कुशिक ! मेरो मूर्तिस्वरूप भएको कोशी नदीमा श्रद्धा, भक्ति र हर्षले स्नान गर्ने व्यक्तिहरूलाई म वर दिन्छु। जुन मानिस, देवता, राक्षस आदिले पनि स्नान गर्छन्, तिनीहरू सम्पूर्ण जन्ममा उत्पन्न पापबाट मुक्त बनून्। म पनि कोशी नदीमा स्नान गर्न जान्छु भन्ने बाटमा सोचेर जो मानिस स्नान गर्न आउँछन् ती मानिस पाइलैपिच्छे अश्वमेध यज्ञको फल प्राप्त गरेर सम्पूर्ण पापबाट मुक्त भई अवश्य स्वर्गलोक जान्छन्।

यति भनेर पार्वती देवी त्यस जलभित्र अन्तर्धान हुनुभयो। कुशिक मुनि पनि जहाँ आदिलिङ्ग थियो त्यसै ठाउँमा गए। त्यसपछि देवता, गन्धर्व, सिद्ध ऋषि त्यस्तै अरूहरूले पनि कोशी नदीमा आएर प्रसन्न हुँदै विधिपूर्वक स्नान गरे। शुम्भ–निशुम्भ, रक्तबीज तथा अरू राक्षसहरूले पनि नदीहरूमा स्नान गरेर सम्पत्ति दान गरेर आदिलिङ्गको पूजा गरे। भगवान् शङ्करबाट वर प्राप्त गरे। पछि देवताहरूसित तिनीहरू धेरै समयसम्म लडे र देवताहरूलाई हराए। आफ्नो स्थानबाट भ्रष्ट भएका देवताहरूलाई देखेर पार्वतीले युद्धमा सम्पूर्ण दैत्यहरूलाई मार्नुभयो। कोशी नदीको जन्म भएको विषयमा उहिले हिमालयमा महादेवको मुखबाट प्रकट भएको कथा यही हो। (हिमवत्खण्ड, प्रकरण– ३, अध्याय– ४०–४३)

### ४.१२ पार्वतीको तपस्या, सप्तगण्डकीको आविर्भाव र देवघाटधामको महत्त्व

हिमवत्खण्डमा वर्णन गरिएअनुसार भगवती पार्वतीले तपस्या गर्ने क्रमलाई निरन्तरता दिइरहनुभयो। यसै क्रममा उहाँले नीलकण्ठपर्वतमा बसी लामो समयसम्म तपस्या गर्दा पहिलेजस्तै गरी अनेक धारा भएका नदीहरूको आविर्भाव भएको वर्णन गरिएको पाइन्छ। अबको प्रसङ्गमा ती नदीहरूको उत्पत्ति कसरी भयो भन्ने कुरालाई यसै ग्रन्थका आधारमा संक्षेपमा प्रस्तुत गरिन्छ।

(क) पार्वतीको तपस्या र सप्तगण्डकीको आविर्भाव

भगवती पार्वती मुनिहरूलाई दानदक्षिणा दिएर नीलकण्ठ (गोसाइँकुण्ड) को तलाउदेखि पूर्वपट्टि पञ्चाग्नि देवता भएको ठाउँमा प्रसन्न हुँदै सखीहरूलाई साथमा लिएर जानुभयो। अनि विधिपूर्वक सबै दान गर्ने सामग्री लिएर पसिनै पसिनाले व्याप्त भएकी देवी त्यहाँबाट तुरुन्त पश्चिमतिर जाने विचार गर्नुभयो र हिमालयको नीलकूट नाम गरेको टाकुरामा जानुभयो। त्यस ठाउँमा महामुनि अत्रि महादेवको पूजा गरेर तपस्या गर्न लागेका थिए। देवीले अत्रि ऋषिलाई विधिपूर्वक पूजा गरेर दुईजोर कपडा, सुन, कैली गाई र तिलका लड्डु दान गर्नुभयो। त्यस कुण्डदेखि दक्षिणतिर अत्यन्त पवित्र अत्रिको आश्रममा देवीको बायाँ पाउबाट अत्यन्त निर्मल पसिना खस्यो। त्यहाँ गण्डक मुनिले गौरीको पैतालाबाट पैदा भएर गुफामा जमेको पसिनाको तलाउ देखे। अत्यन्त बूढा भए तापनि तपस्यामा तत्पर गण्डक ऋषिले बिस्तारै बिस्तारै पसिनाबाट उत्पन्न भएको त्यस तलाउमा गएर सभक्ति डुबुल्की मारेर स्नान गरे।

तलाउबाट बाहिर निस्किएपछि गण्डक ऋषिले आफ्नो शरीरलाई पच्चीस वर्षको युवक भएको देखे। धेरै जन्मदेखि जम्मा भएको पापबाट मुक्त भएका रूपवान् ती ऋषिले पूर्वजन्ममा गरेका सबै कर्महरू देखे। रौं नै रौंले छोपिएका ती गण्डक मुनिले सहस्र भक्तिका साथ गौरीको पसिनाबाट उत्पन्न भएको त्यस जलको पूजा गरे, परिक्रमा गरे र स्तुति गरे। गण्डक ऋषिले भने– प्राणीहरूको जीवनस्वरूप भएकी हे देवी ! लोकमाताको पाउरूपी कमलबाट उत्पन्न एवं सबै जीवहरूको स्वरूप भएकी हजुरलाई नमस्कार छ। हजुर जीवनरूपिणी हुनुहुन्छ, जीवनबाट जीवन दिन समर्थ हुनुहुन्छ र जीवेश्वर हुनुहुन्छ। हजुरलाई नमस्कार छ। प्राणीहरूलाई जन्म दिनुहोस्। अमृतस्वरूप भएकी हे देवी ! हजुरलाई नमस्कार छ। सधैं बग्ने हे देवी ! हजुरलाई नमस्कार छ। अमृत भएर बग्ने अमृतस्वरूपा हे देवी ! हजुरलाई बारम्बार नमस्कार छ। हे कमला ! कल्याण तथा शिवस्वरूप भएकी हे देवी ! हजुरलाई नमस्कार छ। संसारमा सार वस्तु दिन हजुरलाई सभक्ति नमस्कार छ। संसाररूपी डरलाग्दो बाघको क्रीडालाई नाश गर्ने हजुरलाई नमस्कार छ। प्राणीहरूको पापलाई नाश गर्ने हजुरलाई सभक्ति नमस्कार छ। जीवधारीहरूको अन्तःकरणमा बस्ने निर्मल स्वरूप भएकी हजुरलाई नमस्कार छ। हे अनघा ! सबै जीवकी वन्दनीय हजुरलाई नमस्कार छ। सबै रसको स्वरूप भएकी हे देवी ! रसमा रहने र मान्य भएर अनेक रूप लिने मनोरूपा हजुरलाई नमस्कार छ। सबैको आधार भएकी हे देवी ! ध्यान गर्न योग्य विश्वरूपा हजुरलाई नमस्कार छ।

गण्डकमुनिको मुखबाट प्रकट भएको दिव्यस्तुति सुनेर फेरि पनि पसिनाको तलाउबाट जलदेवी प्रकट हुनुभयो। त्यसबेला मुनिले गरेको तीन प्रकारको स्तुतिबाट प्रसन्न भएकी ती जलदेवीले गण्डक ऋषिलाई वर दिने विचार गरी भन्नुभयो– हे भक्त ! हे बाबु ! तिमी जे चाहन्छौ, त्यो वर मसँग माग। तिम्रो स्तुतिले म प्रसन्न भएकी छु, तिमीलाई चाहिएको वर आज दिन्छु। तिमीले आफ्नो स्तुतिरूपी डोरीले बाँधेर दूध दिने गाईलाई यहाँ ल्यायौ। मेरो स्वरूप भएकी ती गाईले चाँडै नै दूधरूपी इच्छा लागेको वस्तु बगाइदिनेछिन्।

गण्डक ऋषिले भने – अनाथ, दुःखी मेरा निम्ति अहिले ठूलो भाग्य खुलेको छ, आज नै मेरा पितृहरू तृप्त भए, आज मेरो तपस्या सफल भयो। आज मेरो जीवन र ज्ञानेन्द्रियहरू सफल भए। ठूलो योग र समाधि लगाएपछि मात्र पाइने हजुरको दर्शन गर्न मैले पाएँ। योगीहरूको मनमा पनि कष्ट नगरी नदेखिने हजुर मलाई अनुग्रह गर्न प्रकट हुनुभयो। हे देवी ! सबै लोकलाई वर दिने, अज्ञानीले देख्न नसक्ने हजुरसँग म यही वर माग्छु। हे भवानी ! म सधैं हजुरको ध्यान लाग्न सकूँ, हजुरको पूजा र सम्झनामा मेरो निष्ठा रहिरहोस्, हजुरलाई नमस्कार छ। हजुरमा सधैं मेरो भक्ति लागोस्। अन्त्यमा हजुरको पाउरूपी अति श्रेष्ठ कमलमा गएर मिल्न पाऊँ। हे आमा ! मलाई यही वर दिनुहोस्।

जलदेवीले भन्नुभयो – हे बाबु ! तिमीले मनमा जे चिताएका छौ, त्यही पूर्ण हुनेछ। यस लोकमा योगेश्वर भएर अन्त्यमा तिमी मेरो पाउमा लीन हुनेछौ। फेरि म तिमीलाई अर्को वर दिन्छु, ध्यान दिएर सुन। मेरो मूर्तिस्वरूप भएको पानीमा पौडिएको हुँदा तिम्रो ममाथि भक्ति बढेको छ, त्यसैले गर्दा जहाँ–जहाँ मेरो पसिनाको थोपा खस्छ, त्यहाँ त्यहाँ ती थोपाहरू नदीको मूर्ति भएर सातवटा धारामा प्रकट हुनेछन्, तिनलाई मेरै मूर्ति ठान। तिमीले सबैभन्दा पहिले स्नान गरेको हुँदा लोकमा गण्डकी र सप्तगण्डकी भनेर ती नदीहरू प्रसिद्ध हुनेछन्। जुन मानिस एकचित्त भएर गण्डकीमा स्नान गर्न घरबाट प्रस्थान गर्छ त्यसले ती नदीमा स्नान गरेपछि पाइलैपिच्छे अश्वमेधयज्ञ गरेको फल पाउँछ। जसले विधिवत् गण्डकी नदीमा स्नान गर्छ त्यो सम्पूर्ण पापबाट मुक्त हुन्छ। जसले त्यहाँ श्राद्ध गर्छ त्यो अक्षय हुन्छ। जसले मेरो अर्थात् गण्डकीको तटमा जप, होम, पूजा र दान गर्छ त्यसले सम्पूर्ण पापबाट मुक्त भएर परमगति प्राप्त गर्छ।

यसरी वर दिएर भावी कुरा सुनाउँदै जलदेवी त्यसै जलमा अन्तर्धान हुनुभयो। त्यसपछि भगवती पार्वती ती ऋषिलाई दान दिएर शिवजीको ध्यान गरी तपस्या गरेर बसेका मरीचि ऋषिले सुहाएको रौप्यशृङ्ग नाम गरेको पर्वतमा पार्वती जानुभयो।

एक योजन यढाबाटै नीलाद्रि पर्वतको पश्चिम शिखरमा सखीहरूका साथ जान लागेकी पार्वतीलाई मरीचिले दर्शन गरे। बत्तीको जस्तो उज्यालो स्वरूप भएकी ती देवीलाई हृदयमा ध्यान गरेर बारम्बार भक्तिपूर्वक स्तुति गर्दै मरीचि ऋषि भगवती गौरीको पछि लागे। पार्वतीले त्यसै ठाउँमा मरीचि ऋषिलाई भक्तिपूर्वक पूजा गरेर तिल, धेनु, सुन, गाई, जनै र लड्डु दान दिनुभयो। त्यसै ठाउँमा गौरीको चिउँडोबाट पसिना खस्यो र त्यस टाकुराबाट तरङ्गमय भएर नदी बग्न थाल्यो। गण्डक ऋषिले सफा कान्ति भएको त्यस नदीको भक्तिपूर्वक पूजा गरेर सहर्ष स्तुति गर्दै स्नान गरे, देवता र पृथ्वीहरूको पनि तर्पण गरे।

फेरि पार्वती महाकूट नाम गरेको अग्लो टाकुरामा जानुभयो। त्यहाँ योगीश्वर तपस्वी पुलस्त्य बसेका थिए। देवीलाई देखेर पुलस्त्य मुनि उहाँको पछि लागे। गौरीले ऋषिको सत्कार गर्नुभयो। जनै, गाई, सुन, तिलका लड्डु, दुईदुई जोर लुगा र असर्फीसमेत दान गर्नुभयो। त्यहाँ पनि देवीको बायाँ ओठको छेउबाट पसिना खस्यो। त्यो पसिना पहेँलो वर्ण भएको नदी भएर पहाडको टाकुरामा झऱ्यो। खुसी भएका गण्डक ऋषिले ती नदीको विधिवत् पूजा गरे, स्तुति गरे, त्यहाँ स्नान गरेर पितृहरूलाई तर्पण दिए।

भगवती पार्वती योगीश्वर पुलह ऋषिले तपस्या गरेको मणिकूट पर्वतमा जानुभयो। उनले देवीलाई देखे, पुलह देवीको पछि लागे। पार्वतीले विधिपूर्वक सहर्ष पञ्चोपचार विधिले दिव्य तेज भएका ती ब्राह्मणको पूजा गर्नुभयो। पार्वतीले गाई, सुन, असर्फी, तिल, जनै र कमण्डलु दान गर्नुभयो र सखर हालेको पीठोबाट निर्मित विभिन्न किसिमका मिष्ठान्नहरू भोजन गराउनुभयो। त्यस ठाउँमा पार्वतीको गालाबाट निर्मल पसिनाको विन्दु खस्यो। त्यो विन्दु त्यसै पर्वतको शिखरबाट सेती गण्डकी भएर बग्यो। राम्रो वेग र तरङ्गले युक्त भएको त्यस नदीलाई देखेर गण्ड ऋषिले भक्तिपूर्वक स्नान गरे, पितृ र देवतालाई तर्पण दिए।

त्यसपछि पार्वती दुई योजन टाढा रहेको उत्तर दिशामा रत्नशृङ्ग पर्वतमा जानुभयो, जहाँ ऋतु ऋषिले तपस्या गरेका थिए। पार्वतीले ती ऋषिलाई कैली गाई, जनै, लड्डु, कमण्डलु र सुन राखेको तिल दान गर्नुभयो। त्यस ठाउँमा पार्वतीको केशबाट निर्मल पसिनाको विन्दु झऱ्यो। त्यो विन्दु विभिन्न वर्ण भएको नदी भएर त्यसै शिखरबाट बग्यो। गण्डर्षिले निर्मल प्रवाह भएकी विश्वलाई पवित्र गर्ने नदीलाई देखेर त्यहाँ स्नान गरे, पितृ र देवतालाई तर्पण दिए।

पार्वती फेरि त्यसभन्दा पश्चिमतिर दुई योजन टाढा जानुभयो। त्यहाँ तपस्वी भृगु ऋषि गौरीको पछि लागे। पार्वतीले पनि दुईजोर लुगा, गाई, तिल, सुन तथा सातु र सख्खर एवं घ्यू मिसिएको खानेकुरा दिनुभयो। त्यहाँ फेरि पार्वतीको निधारबाट निर्मल पसिनाको थोपो खस्यो। त्यो थोपो दूधको जस्तो वर्ण भएको पानी भएर एकशृङ्ग नाम गरेको पर्वतबाट बग्यो। त्यसबेला गण्ड ऋषिले एकशृङ्ग पर्वतबाट झरेकी उत्तम नदीको दर्शन गरे। उनले त्यहाँ भक्तिपूर्वक स्नान गरेर पितृ एवं देवताको तर्पण गरे।

पार्वती दुईवटा शिखर भएको तुङ्गशेखर पर्वतमा जानुभयो, त्यहाँ अङ्गिरा ऋषि पार्वतीका अनुयायी बने। पार्वतीले उनलाई भक्तिपूर्वक पूजा गरेर तिल, गाई, सुवर्ण, घ्यू हालेको लड्डु आदि धेरै वस्तुहरू दान दिनुभयो। त्यसै ठाउँमा उहाँको अपाङ्गबाट निर्मल पसिनाको थोपा झऱ्यो। त्यो थोपा नीलो वर्ण भएको नदी बनेर तुङ्गशेखर पर्वतमा बग्यो। सेतो कागजमा कालो मसीको धारजस्तो भएर बगेको गाजलस्तो नदीलाई देखेर गण्ड ऋषिले त्यसमा स्नान गरे। उनले देवता र पितृहरूको पनि तर्पण गरे। यसरी गण्डसहित सातै मुनिहरूलाई पार्वती देवीले विभिन्न दानहरू दिनुभयो र त्यहाँबाट फेरि प्रस्थान गरी उहाँ नीलकण्ठ तलाउदेखि पूर्वपट्टि पहिले आफूले सङ्गिनीहरूका साथमा बसेर तपस्या गर्दा पञ्चाग्नि देवता प्रकट भएको ठाउँमा आउनुभयो। त्यहाँ पाँच वर्षमा पञ्चाग्निव्रत पूर्ण गरेर भोजन तथा दानहरू प्रदान गरी पार्वती फेरि आफ्नो घरमा जानुभयो।

जुन स्त्रीजातिले ठूलो उत्सवका साथ पाँच वर्षसम्म व्रत गरेर पाँच जना ब्राह्मणलाई विभिन्न किसिमका सामग्रीद्वारा भोजन गराउँछे र दक्षिणा दिन्छे त्यो सबै पापबाट मुक्त भएर पति र पुत्रका साथ यो लोकमा सुखभोग गरी अन्त्यमा परमपदमा पुग्छे। जुन नारीले सङ्कल्पपूर्वक अभिरुचिसाथ जीवनपर्यन्त धर्म गर्छे, त्यसले सबै पापबाट मुक्त भएर आफूले चाहेका सम्पूर्ण मनोरथ पूर्ण तुल्याउँछे। त्यो चक्रवर्ती राजाकी रानी भएर सबै सुखभोग गरी अन्त्यमा आफ्नो कुलको उद्धार गर्न समर्थ हुन्छे र आफू पनि मुक्त हुन्छे।

त्यसपछि जलदेवी जलबाट प्रकट भई गण्डक ऋषिलाई भन्न लाग्नुभयो – हे भाग्यमानी गण्डक! म तिमीलाई फेरि भन्छु, सुन। मेरा यी सबै जलधाराहरूमा श्रद्धापूर्वक तिमीले स्नान गरेका छौ। त्यसैले करोड युगसम्म सुख भोगेर पछि तिमी योगीश्वर हुनेछौ र अन्त्यमा फेरि फर्कनु नपर्ने गरी मैमा तिमी लीन हुनेछौ। हे मुनि ! अब म गण्डकीका सातै धाराका बेग्ला बेग्लै नाम तिमीलाई भन्छु, सुन। धर्मधारा, यशोधारा, विश्वधारा, सितप्रभा, रत्नधारा, सुवर्णाभा र कृष्णाभा, यी गण्डकीका सातवटा धारा हुन्। माहेश्वरी, ब्राह्मी, नारसिंही, वैष्णवी, कौमारी, कालिका र गङ्गा, यी क्रमैले भएका गण्डकी हुन्। लोकमा यिनै नदीहरू क्रमशः धर्मधारा– त्रिशूली, यशोधारा– बूढीगण्डकी, विश्वधारा– मर्स्याङ्दी, सितप्रभा– मादी, रत्नधारा– दरौंदी, दुग्धप्रभा– सेती र कृष्णाभा– कालीगण्डकीका नामबाट प्रसिद्ध छन्।

अत्यन्त पुण्यदायक गण्डकीहरूको परस्पर सङ्गममा स्नान गर्नाले करोडौं गुणा बढी फल प्राप्त हुन्छ। धर्मधाराको नामलाई अतिशय सम्मान गरेर मानिसहरूले त्यसलाई त्रिशूलगङ्गा (त्रिशूली नदी) भन्नेछन्। हे मुनिश्रेष्ठ ! यी नामहरूलाई हृदयमा धारण गरेर अघि तिमीले जहाँ स्नान गरेका थियौ त्यहाँ तिमी जाऊ।

कार्तिक स्वामीले भन्नुभयो– यसरी जलदेवी गण्ड ऋषिलाई इच्छाअनुसारको वर दिएर त्यसै जलमा अन्तर्धान हुनुभयो। जलदेवीबाट इच्छा लागेको वर प्राप्त गरेर गण्ड ऋषि पनि नीलाद्रि पर्वतको पूर्वपट्टिको शिखरमा सहर्ष तपस्या गर्न गए। त्यसपछि देवता, गन्धर्व, पिशाच, गुह्यक र ऋषिहरू आएर उनीहरूले ती नदीहरूमा विधिपूर्वक स्नान गरी देवीको पूजा गरे, तपस्या गरे, जप गरे र भक्तिपूर्वक दान पनि दिएर देवीको फेरि पनि स्तुति गरे। फेरि योग गरे, पर्व–पर्वमा उनीहरूले स्नान गरे। त्यसपछि प्रसन्न भएर ती ऋषि र देवताहरू आ–आफ्नो स्थानमा आए।

हे मुनि ! त्यसै समयदेखि लिएर आजसम्म गौरीको पसिनाबाट प्रकट भएका सबै गण्डकीहरू श्रेष्ठ र पवित्र मानिएका छन्। ती गण्डकीहरूमा जसले स्नान गर्छन् ती व्यक्तिहरूले यमलोक देख्नुपर्दैन, सम्पूर्ण पापबाट मुक्त भएर परमगतिमा पुग्छन्।

गण्डकीहरूको संख्या सात हजार मानिएको छ। वास्तवमा गण्डकीमा जोडिन आउने खोलाहरू समेत गणना गर्दा यसो भएको हो। हिमवत्खण्डमा गण्डकीमा मिसिन आउने खोलाहरूलाई पनि गण्डकीसरह नै उत्तम तीर्थ मान्नुपर्दछ भनिएकाले योगी नरहरिनाथजस्ता महापुरुषहरूले गण्डकीको संख्या सात हजार मान्नुभएको हो। गण्डकीको उत्पत्तिस्थल हिमशिखर, कुण्ड आदिको गम्भीर अध्ययन गरी विभिन्न पत्रपत्रिका एवं पुस्तकहरूको माध्यमबाट निर्वचन गरिएको पाइन्छ। हामीले हिमवत्खण्ड ग्रन्थलाई आधार बनाई समीक्षा गर्नुपरेको हुँदा ती सबै विषयमा गहिरिएर अनुसन्धान गर्नु सम्भव थिएन। यसका लागि विद्वान्‌हरूले यसै हिमवत्खण्डमा बताइएका हिमशिखर एवं कुण्डहरूको आधारमा खोजी गरी नेपालको गौरव गण्डकी नदीको यथार्थ रहस्य बाहिर उजागर गर्नुपर्दछ। (हिमवत्खण्ड, प्रकरण– ३, अध्याय– ४४)

(ख) देवघाटको महत्त्व

स्कन्दपुराणको हिमवत्खण्डको ४४ औं अध्यायमा सप्तगण्डकीको वर्णन गर्ने क्रममा सातै गण्डकीको सङ्गमस्थल देवघाटको महिमा बताइएको छ। सबै नदीहरूको सङ्गम देवघाट तीर्थमा स्नान गर्नाले कोटिकोटि अधिक गुना फल प्राप्त हुन्छ। नदीहरू सबै तीर्थस्वरूप हुन्, देवस्वरूप हुन् र साक्षात् हरिका रूप हुन्। देवघाटमा शिवजी आफ्ना प्रमथगणका साथमा विराजमान हुनुहुन्छ र धेरै देवताहरू त्यहाँ सधैँ निवास गर्दछन्। यसैले देवघाटलाई देवघट्ट, देवाट र देवतीर्थ भनिन्छ। पृथिवीमा रहेका अनेकौँ तीर्थहरूभन्दा देवघाटको ठूलो महिमा छ। नवमी, पूर्णिमा, द्वादशी, अष्टमी, सङ्क्रान्ति, षष्ठी र एकादशी तिथिहरूमा गण्डकीहरूको सङ्गम देवघाटमा स्नान गर्नुपर्दछ कृष्णानदी र त्रिशूलीको सङ्गम देवघाटमा एउटी रानीले स्नान गर्दा राजा पनि पापबाट मुक्त भएका थिए।

रूपकेतु राजाकी जेठी रानी कामप्रभा आफ्ना पतिको हेलाँले गर्दा साह्रै दुःखी थिइन्। एक दिन तीर्थयात्रीहरूसँग बाटमा भेट हुँदा उनीहरू देवघाट जान लागेको थाहा पाएर उनी पनि दुःखबाट मुक्त हुन र पतिको माया पाउन त्रिशूली र कालीगण्डकीको सङ्गममा स्नान गर्छु भन्दै पछि लागेर गइन् र देवघाटमा स्नान गरिन्। त्यस पुण्यको प्रतापले राजा रूपकेतुको हृदय परिवर्तन भयो। उनले आफ्नी जेठी रानी कामप्रभालाई उनको माइतमा गई घरमा ल्याएर क्षमायाचना गर्दै आफ्नो र कामप्रभा रानीको दाम्पत्य जीवनलाई सफल तुल्याउन समर्थ भए। पछि रानीले पनि आफ्ना पतिले जति हेलाँ गरेको भए पनि सबै कुरा बिर्सिइन् र उनले गरेको पाप पखाल्नका लागि मैले गरेको धर्मको आधा भाग दिन्छु भनी सङ्कल्प गरेर धर्मदान गरिन्। उनको पुण्यका प्रतापले राजा रूपकेतु पनि निष्पाप भए र अन्तमा भगवान् शिवको धाममा गए। देवघाटको यो महिमा ज्यादै चमत्कारजनक छ। त्यसैले आत्मकल्याण चाहने हिन्दू नरनारीहरूले श्रद्धापूर्वक पर्व–पर्वमा भए पनि देवघाटमा गई स्नान गरेर मन र आत्मालाई निर्मल तुल्याउनुपर्दछ। (हिमवत्खण्ड, प्रकरण– ३, अध्याय– ४४)

देवघाटको महिमाका सम्बन्धमा विभिन्न शास्त्र एवं पुराणहरूमा गम्भीर चर्चा गरिएको पाइन्छ। सेती र कालीको सङ्गम भएकाले सितासिता नदीहरूको सङ्गम भनी वेददेखि पुराण एवं उपपुराणसम्म देवघाटको महिमा गाइएको छ। अहिले देवघाटका सन्तहरूद्वारा योगी नरहरिनाथज्यूको प्रेरणाबाट देवघाटलाई आदिप्रयागका रूपमा सम्मान गरी यसमा माघमहिनामा कुम्भमेलाको आयोजना गर्ने परम्परा बसालिएको छ। भारतको इलाहावाद जनपदमा रहेको प्रयागराजतीर्थ र नेपालको तनहुँ एवं चितवन जिल्लाको दोसाँधमा रहेको आदिप्रयागतीर्थ लोकमा अत्यन्त प्रसिद्ध छन्। कुम्भमेलाको आयोजना भारतको सम्मानित तीर्थ प्रयागराजमा परापूर्वकालदेखि हुँदै आएको छ।

हाम्रो नेपालमा तीर्थहरूको खोजी गर्ने र सम्मान गर्ने प्रवृत्ति र चेतनाको अभाव भएका कारण तीर्थराज प्रयागभन्दा पनि युगौं पहिलेदेखि आदिप्रयाग भनी सम्मानित गरिएको तीर्थको हामी नेपालीहरूले उपेक्षा नै गरिराख्यौं। कुम्भमेलाका लागि निर्धारित प्रयागतीर्थ आदिप्रयागका रूपमा विख्यात भएकाले नेपालकै देवघाटक्षेत्र हो भन्ने कुरा हाम्रा महापुरुषहरूले निर्धारण गर्नुभएको छ। त्यस्ता महापुरुषहरूमध्ये सर्वश्री ब्रह्मलीन योगी नरहरिनाथ, डा. स्वामी रामानन्द गिरिजी महाराज, श्री लक्ष्मणगिरि महाराज, ब्रह्मलीन दण्डी स्वामी, आशुतोषानन्द सरस्वती, ब्रह्मलीन सन्त परमानन्द सरस्वती, ब्रह्मलीन अघोरी पगलाबाबा, स्वामी चन्द्रेश, ब्रह्मलीन महन्त स्वामी नारायणगिरि शास्त्री, विरक्ति स्वामी नारायणगिरि, स्वामी रामगिरि, ब्रह्मलीन महन्त स्वामी भैरवानन्द वन, स्वामी कैलासानन्द सरस्वती, वैकुण्ठवासी स्वामी जनार्दनाचार्य, वैकुण्ठवासी डिल्लीरमण बाबा, फलाहारी तपस्वी नारायणाचारी, स्वामी बालकृष्णानन्द मुक्तबुद्ध, स्व. पं. छविलाल पोखेल, स्वर्गीय नगेन्द्रप्रसाद रिजाल, आचार्य हरिशरण उपाध्याय, आचार्य खेमराज केशवशरण, प्रा. मुकुन्दशरण उपाध्याय, स्वामी ज्ञानानन्द सरस्वती, महाराजलगायत सन्त, महन्त एवं विद्वान्हरूले आदिप्रयाग देवघाट नै कुम्भमेलाका चार धाममध्ये एक धाम हो भनी देवघाटमा कुम्भस्नान परम्परा स्थापित गराउन अभिप्रेरित गर्नुभएको छ र केही वर्षदेखि यता माघमहिनाभरि देवघाटमा कुम्भमेला मनाउन थालिएको छ।

लोकमा देवघाटको आदिप्रयागका रूपमा प्रचार नभएकाले देवघाटको महिमा उजागर गर्नुपर्छ भनी प्रा. मुकुन्दशरण उपाध्यायसहित आचार्य नारायणप्रसाद तिमल्सिना एवं हरिकृष्ण उपाध्यायजस्ता अनेकौं महानुभावहरू प्रचारप्रसारमा लाग्नुभएको छ। ब्रह्माजीले यज्ञ गरेको समय सत्ययुगमा भगवती गण्डकी एवं त्रिशूलीको सङ्गम भइसकेको हुँदा यस क्षेत्रको नाम आदिप्रयाग रहेको थियो र त्रेतायुगमा रामका पूर्वज भगीरथ राजाले तपस्या गरी गङ्गालाई धर्तीमा अवतरण गराएपछि भारतको इलाहावाद जिल्लाको प्रयागतीर्थ तयार भएको तथ्य शास्त्रबाटै प्रमाणित भएको हुँदा देवघाटधाम अर्थात् आदिप्रयागधाम प्रयागराज भन्दा पनि जेठो तीर्थ ठहर्छ। त्यसैले देवघाटमा कुम्भमेलाका लागि प्रेरणा दिनुहुने र त्यसलाई निरन्तर कुम्भमेलाक्षेत्र बनाउन लागिपर्नु हुने प्रा. मुकुन्दशरण उपाध्याय, आचार्य नारायणप्रसाद तिमल्सिना र हरिकृष्ण उपाध्यायजस्ता मनीषीहरू धन्यवादका पात्र हुनुहुन्छ।

हेमाद्रि तीर्थखण्डमा–

नेपालश्चोत्तमो देशो काश्याश्च विद्यते गुणैः। दशगयासमं पुण्यं नेपालस्पर्शमात्रतः॥

भन्ने उल्लेख गरिएकाले नेपाललाई शास्त्रहरूमा काशी र प्रयाग भन्दा पनि उत्तम देश मानिएको छ। यसैगरी उक्त ग्रन्थमा नै बताइएको छ–

मकरस्थे दिवानाथे वृषगे च बृहस्पतौ। कुम्भयोगो भवेदादिप्रयागे तीर्थनायके॥

अर्थात् सूर्य मकर राशिमा र बृहस्पति वृष राशिमा जाँदा तीर्थशिरोमणि आदिप्रयाग देवघाटमा कुम्भयोग हुन्छ अर्थात् कुम्भमेला हुन्छ। यस्ता प्रमाणहरूबाट नेपालको देवघाट आदिप्रयाग र कुम्भमेलाको पावन भूमि भएको कुरा सिद्ध हुन्छ। वस्तुतः हामी नेपालीहरू आफ्ना तीर्थहरूको प्रचारप्रसार र महिमा–विस्तार गर्न अल्छी भएका कारण हाम्रा महत्त्वपूर्ण रत्नहरू ओझेलमा परेका छन्। हर्षको कुरा छ कि अहिले आएर यसतर्फ संस्कृतिविद्, शास्त्रविद् र अध्यात्मसाधकहरूमा चेतना फैलिएको छ र त्यस चेतनाले सम्पूर्ण नेपालीलाई चैतन्यपूर्ण बनाउने कुरामा आशावादी बन्न सकिन्छ।

### ४.१३ गोसाइँकुण्डको उत्पत्ति र महिमा

अघि कुनै कल्पमा देवता र दानवले परस्पर मिलेर ब्रह्माजीसँग भने– हामी अब समुद्र मन्थन गर्छौं। ब्रह्माजीको आज्ञा अनुसार परस्परमा कुराकानी गरेर देवता र दैत्यहरू जम्मा भई क्षीरसागरको तीरमा गए। क्षीरसागरको मन्थन गर्ने इच्छा लिएर देवता र राक्षसहरूले मिलेर मन्दराचल पर्वतलाई मदानी बनाए, वासुकिलाई नेती बनाए। मन्दराचलको मदानी विष्णुको हातमा अड्याएर देवता र दानवहरूले समुद्रमन्थन गरे। समुद्रबाट निस्किएकी लक्ष्मीलाई विष्णुले लिए, घोडालाई सूर्यले लगे, कल्पवृक्ष र ऐरावत हात्ती इन्द्रले लगे, धनुष कुमारले लिए। त्यस देवदावनको सभामा दैत्यहरूले जबर्जस्ती गरेर अमृत लगे।

त्यसपछि समुद्रबाट डरलाग्दो हलाहल विष निस्कियो। त्यसले सम्पूर्ण लोकलाई नै क्षुब्ध तुल्याएर ग्रस्त पार्न लागेको देवता तथा दानवहरूले देखे। लोकलाई क्षुब्ध तुल्याउने त्यो विष देखेर देवता तथा दानवहरू डरले समुद्रमन्थन गर्न छाडेर रुद्रको शरणमा गए। आफ्ना शरणमा आएका शरणार्थीलाई सदा शरण दिने शिवले अवश्य रक्षा गर्नुहुन्छ भन्ने ठानेर भगवान् रुद्रका शरणमा पुगेका भयभीत देवता र राक्षसहरूले उहाँका समक्ष विन्ती गरे– हे शरणदायक! शिपिविष्ट! त्रिशूल लिएर सम्पूर्ण प्राणीहरूमाथि दया गर्ने हे महेश्वर! लोकपति! हजुरलाई नमस्कार छ। हे महादेव! हे लोकरक्षक! हलाहल विषले पोलेर शरणमा आएका हामी सबैको रक्षा गर्नुहोस्।

हलाहल विषका कारण अतिशय भयाकुल देवदानवको वचन सुनेर शङ्करले भन्नुभयो– हे देवता एवं राक्षसहरू हो ! तिमीहरू नडराओ, त्यसको प्रतीकार म गर्छु। यति भनेर भगवान् शङ्करले देवता र राक्षसहरूलाई आश्वासन दिनुभयो। त्यसपछि देवता तथा राक्षसहरूलाई लघार्दै आएको नीलो गाजलजस्तो अत्यन्त डरलाग्दो तीक्ष्ण विष देखेर भगवान् शङ्कर रिसाउनुभयो । विष भन्ने थाहा हुँदाहुँदै पनि सम्पूर्ण प्राणीहरूको हितका निमित्त उहाँले त्यसलाई हातले समातेर तुरुन्त पिउनुभयो। अत्यन्त नीलो वर्ण भएको त्यो विष तुरुन्त महादेवको घाँटीमा पुग्यो। पेटभित्र प्रवेश गरेन र जिब्रोमा पनि बसेन। विषले महात्मा शिवजीको पेटभित्र पनि दाह पैदा गऱ्यो, सम्पूर्ण इन्द्रिय र मनलाई पनि तुरुन्तै क्षुब्ध तुल्यायो। घाँटीको बीचमा अत्यन्त नीलो वर्ण भएको यो विष रहेको हुँदा सबै मानिसहरूले भगवान्लाई नीलकण्ठ भने। आफू विह्वल भएको देखेर भगवान् शङ्करले एकछिन विचार गर्नुभयो– यदि यसलाई मैले ओकलें भने यसले तुरुन्तै सम्पूर्ण संसारलाई नष्ट गरिदिन्छ। त्यसैले अब म यहाँ बस्दिन, हिमालय पर्वतमा जान्छु। जहाँ पहिले पार्वतीले तपस्या गरेकी थिइन्, त्यसै कुण्डमा डुब्छु। त्यहाँ स्नान गरें भने हलाहल विष शान्त हुनेछ। त्यसैले गौरीको पाउको पसिनाबाट बनेको त्यसै अभयप्रद कुण्डमा गएर बस्छु। यही नै प्रतीकारको बाटो छ, अर्को छैन।

विषको तापले विह्वल हुनुभएका भगवान् शङ्कर यस्तो विचार गरेर रुद्रलोकबाट हिमालयमा आउनुभयो। विषको ज्वालाले शरीर डढेका भगवान् शङ्कर हातमा वेतका लठ्ठी र काँधमा त्रिशूल राखेर विस्तारै विस्तारै हिमालयको पर्वतमा चढ्नुभयो। जुन टाकुरामा महादेवले पहिले वेत रोप्नुभएको थियो त्यसको नाउ वेत्रकूट भयो। थकाइले गर्दा वेतलाई त्यहीँ छोडेर भगवान् त्रिशूलपर्वततिर लाग्नुभएको थियो। वेत रोपेका ठाउँबाट कल्याणदायक जल निस्कियो। त्यो जल वसुधाराजस्तै बनेर गुफामा झर्दा वेत्रावती नदी निस्किइन्। देवता र ऋषिहरूले शिवजीको वेत्रबाट पैदा भएकी नदीलाई देखेर भक्तिपूर्वक त्यहाँ आई स्नान गरे। उनीहरूले विधिपूर्वक देवता र पितृहरूलाई तर्पण दिए, स्थिर भएर जप गरे र ब्राह्मणहरूलाई दान दिएर फेरि आ–आफ्नो स्थानमा फर्किए। गन्धर्व, अप्सरा, सिद्ध, यक्ष र त्यस्तै अरू पनि त्यहाँ आनन्द मानेर भक्तिपूर्वक स्नान गरी आ–आफ्नो स्थानमा गए।

वेत्रबाट उत्पन्न भएकी ती गङ्गालाई वेत्रगङ्गा भनियो। ती गङ्गा गङ्गाजत्तिकै भइन्। देवता, राक्षस र ऋषिहरूले तिनको स्तुति गरे। त्यस नदीमा स्नान गर्नाले मानिसहरू सूर्यजस्तो तेजिलो यानमा चढी सहर्ष शिवलोकमा गएर ससम्मान बस्न पाउँछन्। त्यस ठाउँमा गरेको जप, हवन र दानबाट अक्षय फल प्राप्त हुन्छ। त्यहाँ श्राद्ध गर्ने मानिसले कारणवश पितृहरू नरकमा बसेका रहेछन् भने पनि तिनको उद्धार गर्छ। भगवान् शङ्कर त्यहाँबाट माथितिर रहेको शूलाद्रि पर्वतको शिखरमा जानुभयो। परिश्रम र प्यासले आत्तिएर शिवजी त्यहाँ बस्नुभयो। विषले भित्रभित्रै डढेर तिर्खाले आत्तिनुभएका भगवान्ले त्यहाँ त्रिशूल रोपेर गङ्गालाई सम्झनुभयो। त्रिशूल गाडेको हुँदा त्यसै ठाउँबाट गङ्गा पैदा हुनुभयो। गङ्गाजीले आनन्दसित शिवजीको थकाइलाई हरण गर्नुभयो। ती गङ्गालाई पैदा गराएपछि त्रिशूल हातमा लिने भगवान् शङ्करले त्रिशूल उखेली नीलाचलमा रहेको चन्दनाचलमा आरोहण गर्नुभयो। त्यसपछि त्यस पर्वतको शिखरबाट स्वच्छ तरङ्ग भएकी शीतल झरनाको निनादले निनादित पवित्र गङ्गा पैदा भइन्। चीसो जल भएकी र वेगसित झरनाका रूपमा झरेकी ती गङ्गा उत्सवमा वसुधाराजस्तै भएर विराजमान भएकी छन्। सबै देवताहरूका गण, सिद्ध, देवर्षि, गन्धर्व, अप्सरा, यक्ष र दानव त्यहाँ गए। ब्रह्मा, विष्णु, इन्द्र, चन्द्र, सूर्य, अग्नि, वायु, वरुण, यम र निर्ऋतिहरू पनि त्यहाँ आए। ती सबै देवता र राक्षसहरूले त्रिशूलगङ्गामा आनन्दसित डुबुल्की मारेर भक्तिपूर्वक स्नान गरे र विधिपूर्वक पूजा गरे।

उनीहरूले ध्यान गरे, जप गरे, खुसी भएर दान दिए, वरहरू मागेर फेरि तीनै किसिमको भक्तिद्वारा गङ्गाको स्तुति गरे। स्नान गरेर पवित्र भएका गन्धर्व, अप्सरा र देवताहरू गङ्गासित वर मागेर फेरि आ–आफ्नो स्थानमा गए। त्यसै समयदेखि विश्वलाई पवित्र तुल्याउने ती त्रिशूली नदी रुद्रले आराधना गरेको हुँदा रुद्रगङ्गाको नामले प्रसिद्ध भइन्। जुन बुद्धिमान् मानिसहरूले त्यस नदीमा भक्तिपूर्वक स्नान गर्छन्, तिनीहरू सम्पूर्ण पापबाट मुक्त भएर परमगतिमा पुग्छन्। ज्ञान नभए पनि जुन मानिसले ती गङ्गामा स्नान गर्छन्, तिनीहरू पापबाट मुक्त भएर परिवारसहित स्वर्ग जान्छन्। त्रिशूलगङ्गामा स्नान गर्दा गङ्गामा स्नान, दान, जप र पूजा गरेभन्दा हजारौँ गुना बढी फल प्राप्त हुन्छ।

त्रिशूलीमा जप तथा पूजा गर्ने मानिसले मोहरूपी चोलालाई छोडेर ज्ञानरूपी चोलो लगाई तुरुन्त मोक्ष प्राप्त गर्छ। जुन नारीले त्यस नदीमा स्नान गर्छन् तिनीहरू धनधान्य र सन्तति प्राप्त गरी सुन्दरी भएर सधैँ पतिका प्रिय बन्न पुग्छन्। जसले त्रिशूलगङ्गामा स्नान गरेर श्राद्ध गर्छन् तिनका दश कुल अगाडिका पितृहरू र दश कुल पछाडिका वंशज अर्थात् २१ कुललाई उद्धार गरेर तुरुन्तै स्वर्ग जान्छन्।

चन्दनाचल अर्थात् चन्दनबाडीलाई नाघेर लोकलाई हित गर्न चाहने भगवान् शङ्कर नीलाद्रि पर्वतको फेदमा पुग्नुभयो। विषले क्षुब्ध शरीर बनेका भगवान् शङ्कर थकाइले गर्दा नीलाद्रि पर्वतको फेदीमा बस्नुभयो। उकालो हिँड्न सक्नुभएन। उहाँले

विषको ताप हट्यउन गौरीको पसिनाबाट उत्पन्न भएकी धर्मधारालाई सम्भनुभयो र त्रिशूलले पहाड छेड्नुभयो। त्यसबेला तुरुन्त स्वच्छ र निर्मल पसिना धर्मपर्वतबाट निस्किएर तीनवटा धारा भएर बग्यो। शम्भुका जटाजूटबाट प्रकट भएकी त्रिपथगा गङ्गा निर्मल तीन धारा लिएर धर्मपर्वतबाट वहन थालिन्। अत्यन्त गहिरो भएर त्रिशूलबाट निक्ली तीनवटा धारामा बगेकी हुँदा देवता र राक्षसहरूले उनलाई त्रिशूलगङ्गा भने। त्रिशूलबाट उत्पन्न भएकी शिवजीको जस्तो नीलो आकृतिले सुहाएकी अमृतजस्तै स्वच्छ र स्फटिकजस्तो कान्ति भएकी ती गङ्गा त्यस शिखरमा तलाऊ बन्न पुगिन्। स्वच्छ पानीले भरिएको, धेरै तरङ्गले युक्त आठ वटा खाल्टा भएको त्यो गहिरो तलाउलाई देखेर भगवान् शङ्कर अत्यन्त खुसी हुँदै तलाउमा प्रवेश गर्नुभयो र ज्यादै चीसो जलमा आनन्दसित सुत्नुभयो। सम्पूर्ण प्राणीहरूलाई पुण्यफल दिने त्यस तलाउमा भगवान् शङ्कर जलले आफूलाई ढाकेर दिव्य सय वर्षसम्म आनन्दसित सुत्नुभयो।

नीलकण्ठ तलाउबाट त्यो जल बाहिरतिर बग्यो र त्यसभन्दा मुनि बाटुला कुण्डहरू बने। फटिकबाट निस्किएको निर्मल, सुशीतल, एउटै आत्मालाई दुई भागमा पारेर गणेश र क्षेत्रपाललाई जलले परिपूर्ण सरस्वतीकुण्ड आदि अनेक कुण्ड तयार भए। नीलकण्ठले भन्नुभयो– हे गणेश ! हे क्षेत्रपाल ! यसभन्दा पश्चिमपट्टि रहेको ढोकालाई परिवारका साथ बसेर तिमी दुईले सधैँ रक्षा गर्नू। यो क्षेत्रलाई रक्षा गर्दै तिमीहरू बस, पापीहरूलाई आउन नदेओ, सम्पूर्ण प्राणीहरूमाथि शासन गर।

सुरश्रेष्ठ गणेश र क्षेत्रपाल भगवान् शङ्करबाट उत्तम वर प्राप्त गरेर उहाँको अनुमति लिई त्यस ढोकाको रक्षाका निमित्त गए। त्रिशूल पर्वतको दक्षिण पाखाको थुम्कामा सुन्दर उत्तम द्वार छ, त्यहाँ आफ्ना गणहरूका साथ गणेश र दण्डपाणि क्षेत्रपाल गएर बसे। महादेवको शासनलाई उल्लङ्घन गरेर ब्रह्मा, विष्णु आदि देवता पनि नीलकण्ठ क्षेत्रमा प्रवेश गर्न सक्दैनन्। त्यसै समयदेखि ती दुई क्षेत्रपाल सबै ढोकामा बसेका छन्। भक्तिभावले तिनको पूजा, वन्दना गरेपछि मात्र ब्रह्मा आदि गरिएका देवताहरू पनि त्यहाँ जान पाउँछन्, नत्र पाउँदैनन्।

नीलकण्ठ सरोवर अथवा गोसाईंकुण्डमा पुगेपछि जुन मानिसले स्नान गर्छ, भगवान् शिवको ध्यान गर्छ र उहाँको मन्त्रजप गर्दछ भने त्यसले कोटि–कोटि पुण्यलाभ गर्दछ। अन्त्यमा शिवतुल्य भई शिवधाममा जान्छ। नीलकण्ठमा स्नान गर्ने मानिस करोडौं जन्ममा गरिएका पापबाट मुक्त हुन्छ। बारम्बार धर्तीमा चक्रवर्ती राजा भएर सुखभोग गर्छ, त्यसलाई अन्तमा शिवका दूतहरूले कैलाससमा पुऱ्याउँछन्। त्यहाँ गई भगवान् शिवको दर्शन गर्ने र कुण्डमा स्नान गर्ने मानिस पाँच किसिमका महापापबाट मुक्त हुन्छन्। गोसाईंकुण्डको जलको स्पर्श पाउँदा मानिस मात्र होइन पशुपक्षी र शिलाहरू पनि मुक्त हुन्छन्। कुनै मानिसले त्यहाँ गएर पितृहरूलाई पिण्डपानी प्रदान गर्दछ भने त्यसका पितृहरूको उद्धार हुन्छ र उनीहरू आनन्दित हुन्छन्। गोसाईंकुण्डमा गएर कसैले यज्ञ गर्दछ भने त्यो व्यक्ति दशौं हजार कल्पसम्म शिवलोकमा आनन्दभोग गर्दछ।

यसैगरी त्यहाँ रहेका अरू कुण्डहरूमा स्नान गर्दा पनि उत्तम फल प्राप्त हुन्छ। जुन मानिसले नेपालमा जन्म लिएर गोसाईंकुण्डमा स्नान गर्दैन त्यसको जुनी व्यर्थ छ। जसले नीलकण्ठको दर्शन, स्नान र नीलकण्ठको नजिकै रहेका पर्वतहरूमा आरोहण गर्दैनन त्यसको पनि जन्म व्यर्थ हुन्छ। जुन मानिस म गोसाईंकुण्ड नुहाउन जान्छु भनी पाइला अगाडि बढाउँछन् तिनले पाइला–पाइलामा अश्वमेधयज्ञ गरेको फल पाउँछन्। गोसाईंकुण्ड वरिपरि, दीपकुण्ड, पयकुण्ड, यज्ञकुण्ड, अग्निपूरकुण्ड, धर्मकुण्ड आदिका साथै चन्द्रकुण्ड र सूर्यकुण्ड पनि रहेका छन्। ती ती कुण्डहरूमा स्नान गर्ने मानिसहरू पनि गौरीलोकमा प्राप्त हुन्छन्। (हिमवत्खण्ड, प्रकरण– ३, अध्याय– ४५ देखि ४७)

### ४.१४ वृन्दा एवं विष्णुको कथा, कालीगण्डकीमा पाइने शालग्रामका भेद र कालीगण्डकीको महिमा

प्रस्तुत शीर्षक अन्तर्गत जालन्धरकी पतिव्रता पत्नी वृन्दा र लोककल्याणका लागि उनको शीलहरण गर्नुहुने भगवान् विष्णुको लीलावर्णन गर्दै वृन्दाद्वारा अभिशप्त विष्णु गण्डकीमा चक्राङ्कित शिलाका रूपमा परिणत हुनुहुँदा उहाँ शालग्राम भगवान् भनी लोकवन्दित हुनुभएको र कालीगण्डकीभित्र वज्रकीटद्वारा तयार गरिने शालग्रामका भेद अनि शालग्रामधारिणी कालीगण्डकीको महिमा जस्ता विषयहरू समावेश गरिएका छन्।

#### (क) वृन्दा एवं विष्णुको कथा

हिमवतखण्डका अनुसार जालन्धरकी पतिव्रता पत्नी वृन्दा सतीधर्म हरण नगर्दासम्म महादुष्ट राक्षस जालन्धरको मृत्यु नहुने तथ्य थाहा पाएर भगवान् विष्णुले देवताहरूको कल्याणका लागि जालन्धरको रूप लिएर छलपूर्वक वृन्दासँग रमण गर्नुभयो। वृन्दाले रमण भइसकेपछि आफूसँग रमण गर्ने मानिसको छाँटकाट बेग्लै रहेको थाहा पाइन् र उनको हातमा शङ्ख, चक्र, गदा पनि देखिन्। यी व्यक्ति साक्षात् विष्णु रहेछन् भन्ने थाहा पाएर भनिन्– हे विष्णु ! तिमी अर्काको छिद्रान्वेषण निकै गर्दा

रहेछौ, सधैँ ढाँट्ने बानी रहेछ, परस्त्रीमाथि गमन गर्नु भनेको महापाप हो भनेर जान्दा-जान्दै पनि तिमीले मलाई किन छल गऱ्यौ ? एक्लै भएको बेला पारी मौन भएर म पतिव्रतालाई छल्यौ, त्यसैले गर्दा तिमीलाई परस्त्रीगमनको पापले ढुङ्गा भएर बस्नुपरोस्। रजोगुण भएको शरीरले, मुर्ख्याईंका कारणले, धनको मादले र बलको घमण्डले जुन मानिसले परस्त्रीमाथि गमन गर्दछन्, ती नरकमा पर्दछन्।

वृन्दाको त्यो सराप सुनेर विष्णु एकछिन चिन्तित हुनुभयो र कालीगण्डकीमा स्नान गर्न जानुभयो। समस्त लोकको हित गर्नका लागि विष्णुले कालीगण्डकीको जलमा स्नान गरेर अवतार लिने विचार गर्नुभयो। वृन्दाको सरापबाट प्रेरित भएर जब विष्णुले कालीगण्डकीमा स्नान गर्नुभएको थियो त्यसैबेला विश्वकर्मालाई बोलाएर आफ्ना अरू मूर्ति बनाउनका लागि निर्देशन दिँदै भन्नुभयो- हे विश्वकर्मा ! तिमीले सुनौला ढुङ्गाले मेरा मूर्तिहरू बनाऊ। वज्रकीट नामक कीरा भएर कालीगण्डकीभित्र बसी शालग्रामशिलाको निर्माण गर। कालीगण्डकीमा जति शिला छन् तिनीहरूमा फरक-फरक चिह्नहरू अङ्कित गरी अलग-अलग शालग्राम निरन्तर बनाऊ।

महाविष्णुले विश्वकर्मालाई यसरी सम्झाएपछि दुबैले तुरुन्तै कालीगण्डकीको जलमा सँगै स्नान गर्नुभयो। वृन्दाको सरापले गर्दा सम्पूर्ण प्राणीका हितका निमित्त भगवान् विष्णु शालग्रामशिलाका रूपमा परिणत हुनुभयो। विश्वकर्माले पनि वज्रकीट भएर सुवर्णजस्ता पहेँला, सेता आदि अनेकौँ रङ्ग, चिह्न र चक्रले युक्त भएका विष्णुका अवतारस्वरूप विभिन्न मूर्तिहरूको सिर्जना गरे। त्यसै समयदेखि आफ्नो मनोरथ पूरा गराउन मानिसहरू भक्तिपूर्वक विष्णुका अवतार शालग्रामशिलाको पूजा गर्छन्।

(ख) शालग्रामका भेद, शालग्रामशिला र कालीगण्डकीको महिमा

(अ) शालग्रामका भेद-

(१) वासुदेव- हिमवत्खण्डमा वर्णन गरे अनुसार गण्डकीका जुन शिलाको द्वारभागमा पृथक् पृथक् रूपले रहेका समान किसिमका चक्रहरू छन्, सेतो वर्ण छ र सुन्दर स्वरूप छ, त्यस शालग्रामलाई भगवान् वासुदेव भनेर जान्नुपर्छ।

(२) प्रद्युम्न- लामो आकार भएको, धेरै छिद्र भएको र सूक्ष्म चक्र भएको, अत्यन्त राम्रो एवं पहेँलो र केही रातोजस्तो वर्ण भएको शालग्रामलाई प्रद्युम्न भगवान्‌को मूर्ति भनिएको छ ।

(३) अनिरुद्ध- तीन रेखा भएको, कमलका जस्ता चिह्नले युक्त भएको, नीलो वर्णको र अत्यन्त राम्रो शालग्रामलाई अनिरुद्ध भगवान्‌को मूर्ति मानिएको छ।

(४) नारायण- श्यामवर्ण भएको, नाभिमा चक्र भएको, अग्लो खालको, लामो रेखाले युक्त भएको र दायाँपट्टि प्वाल परेको शालग्रामलाई भगवान् नारायणको मूर्ति मानिन्छ।

(५) मत्स्यावतार- दायाँ र बायाँपट्टिको काँध लामो भएको, कैलो वर्णको शिलालाई मत्स्यावतार भनिएको छ।

(६) कूर्मावतार- तीन विन्दु भएको, शङ्ख र चक्रले सुशोभित, चौबीस लक्षणले युक्त, सूर्यमण्डलको आकारको शिलालाई कूर्मावतार भनिएको छ।

(७) वराहावतार- यसरी नै बीचमा राम्रो चक्र भएको, बँदेलको आकारको शिलालाई वराह अवतार मानिएको छ।

(८) नृसिंहावतार- इन्द्रनीलमणिजस्तै चम्किलो, ठूला-ठूला तीनवटा रेखाले युक्त भएको, कैलो रङ्गको, छुट्टाछुट्टै दुईवटा अग्ला चक्र भएको शालग्रामशिलालाई भगवान् नृसिंहको मूर्ति मानिएको छ। ब्रह्मचर्य व्रत धारण गर्ने व्यक्तिले मात्र नृसिंहमूर्ति मानिएको शालग्रामशिलाको पूजा गर्नुपर्दछ, अन्यथा विघ्न पर्दछ।

(९) लक्ष्मीनृसिंह- विन्दुसहित बायाँपट्टि सुन्दर वर्ण भएका दुईवटा चक्र भएको, कालो वर्णको शालग्रामशिला लक्ष्मीनृसिंहको मूर्ति हो। यसको पूजा गर्नाले भुक्ति तथा मुक्ति प्राप्त हुन्छ।

(१०) वामन- कदमको फूलजस्तो पाँच रेखाले युक्त भएको, बाटुलो र सबैभन्दा सानो शालग्रामलाई वामनको स्वरूप मानिएको छ।

(११) राम, परशुराम र बलराम- शङ्ख आदि चिह्नले युक्त भएको, पहेँलो वर्णको, बाण, वञ्चरो र हलो चिह्नले सुशोभित शालग्राम शिलालाई क्रमशः राम, परशुराम तथा बलरामका स्वरूप मानिन्छ। यी शिलाको पूजाबाट अकालमृत्युको हरण हुन्छ।

(१२) सुदर्शन- सुदर्शन नाम गरेको शालग्रामशिलाको आकार आलसको फूलजस्तो अत्यन्त नीलो वर्ण र विन्दुले युक्त हुन्छ। यसको आराधना गर्नाले विभिन्न किसिमका ऐश्वर्य र सुखको प्राप्ति हुन्छ।

(१३) दामोदर– बायाँतिर गदा र दायाँतिर रेखा र अनि बीचमा पनि चक्र भएको ठूलो आकारको शालग्रामलाई दामोदर भनिएको छ।

(१४) ब्रह्मा– पद्म र चक्रले युक्त, सेतो वर्ण भएको शिलालाई ब्रह्माको मूर्ति जान्नुपर्छ।

(१५) विष्णु– गोलकाँक्रीको जस्तो आकार भएको र कहीँ कहीँ पहेँलो वर्ण भएको, कालो वर्ण पिठ्यूँतिर भएको, मोटा–मोटा सुन्दर दुई चक्र भएको शालग्रामलाई विष्णुको मूर्ति भनिएको छ।

(१६) श्रीधर– जुन शिलाको बीचमा गदाका आकारका पाँचवटा रेखा रहेका हुन्छन् र वनमालाको चिह्न पनि अङ्कित भएको हुन्छ त्यस्तो शालग्राम श्रीधरको मूर्ति हो।

(१७) त्रिविक्रम– कदमको फूलजस्तो चिह्न भएको, तलतिर सेतो वर्ण भएको, ठाडो रेखासहित एवं दायाँ बायाँतिर पनि एक–एकवटा रेखा भएको चिल्लो र श्यामवर्णको शालग्राममलाई त्रिविक्रमको मूर्ति भनिन्छ।

(१८) हयग्रीव– हयग्रीव नारायणको शिलामा अङ्कुश आकारको चिह्न हुन्छ। चक्रको नजिकैबाट रेखाहरू गएका हुन्छन्, हरियो वर्ण हुन्छ र प्रशस्त थोप्लाहरू हुन्छन्।

(१९) गदाधर– तीन रेखा र मध्यभागमा तीनवटा चिह्न भएको शालग्रामलाई गदाधरको मूर्ति मानिएको छ।

(२०) अनन्त– विभिन्न किसिमका वर्णहरूले युक्त भएको, नागको चिह्न भएको र अनेकौँ मुख भएको शालग्रामलाई अनन्त भनिएको छ।

(२१) कृष्ण– दायाँतिर गोलाकार चिह्न भएको र वनमालाले विभूषित शालग्रामशिलालाई कृष्णको मूर्ति भनिएको छ। यो शिलाको पूजा गर्नाले धनधान्य र सुख प्राप्त हुन्छ।

(२२) चतुर्मुखी ब्रह्मा– जसका दुबैतिर नजिकै चारवटा रेखा छन् र माझमा दुईवटा चक्र देखिन्छन् भने त्यस शिलालाई चतुर्मुखी ब्रह्माको शिला भनी बुझ्नुपर्छ।

(२३) शिव– जसको तलतिर कूर्म आकार भएको चक्र र बीचमा खुरको आकार हुन्छ त्यो शिवनामक शिला मान्नुपर्दछ। यो अत्यन्त दुर्लभ हुन्छ। यसबाट सकल कामनाहरू सिद्ध हुन्छन्।

(२३) लक्ष्मीनारायण– कमलको चिह्न भएको, भित्रतिर चार चक्रले युक्त भएको, बाहिरपट्टि खुर तथा वनमालाले सुशोभित शिलालाई लक्ष्मीनारायणको मूर्ति भनिएको छ। जसले आफ्नो घरमा लक्ष्मीनारायण शालग्राम राखेर पूजा गर्छ, त्यसले दारिद्र्य, शोक र दुःख व्यहोर्नुपर्दैन। त्यसले चोर, आगो र क्रूरग्रहले दिएको पीडा पनि व्यहोर्नुपर्दैन। यस्तो शालग्रामको पूजा गर्ने व्यक्तिले मोक्ष पाउँछ।

(२४) पुरुषोत्तम– जुन शिलाको चारैतिर मुख देखिन्छ, त्यो भगवान् पुरुषोत्तमको मूर्ति हो। सधैँ यसले भुक्ति तथा मुक्ति दिन्छ।

(२५) विभिन्न वर्णका शालग्राम– सेतो वर्णको शिलालाई वासुदेव भन्छन्, रातो शिलालाई सङ्कर्षण, नीलो शिलालाई दामोदर तथा अनिरुद्ध भनिएको छ। श्यामवर्णको शालग्रामलाई नारायण, श्रीकृष्ण र विष्णुको शिला मानिएको छ। केही रातो वर्ण भएको शिलालाई अनन्त र पहेँलो वर्णको शिलालाई श्रीधरको मूर्ति भनिन्छ। कैलो र पहेँलो मिसिएको वर्णको शालग्राम पूजा गर्नाले पत्नीको नाश हुन्छ, नीलो वर्णको शालग्राम पूजा गर्नाले सम्पत्ति प्राप्त हुन्छ। कालो वर्णको शालग्राम पूजा गर्दा वृद्धि र पुष्टि प्राप्त हुन्छ, सेतो शालग्रामको पूजा गर्नाले कल्याण तथा मुक्ति प्राप्त हुन्छ। पहेँलो वर्णको शालग्रामको पूजा गर्नाले धन प्राप्त हुन्छ, रातो वर्णको शालग्राम पूजा गर्नाले राज्य प्राप्त हुन्छ। अत्यन्त रातो वर्णको शालग्रामको पूजा गर्नाले रोग पैदा हुन्छ र कालो वर्णको शालग्रामको पूजा गर्नाले कीर्ति प्राप्त हुन्छ। पाण्डुर वर्णको शालग्राम पूजा गर्दा पाप नाश हुन्छ। खैरो वर्णको शालग्राम पूजा गर्दा सधैँ भय र उद्वेग आइलाग्छ।

(२६) विभिन्न परिमाण र रूपका शालग्राम– धेरै ठूलो शालग्रामले आयु नाश गर्छ तथा टेढो शालग्रामले दारिद्र्य पैदा गर्छ। शालग्राम चिल्लो छ भने सधैँ सिद्धि दिन्छ, कुनै चिह्न नभएको शालग्रामको पूजा गर्नाले कुनै पनि फल पाइदैंन। धेरै चक्र भएको, कैलो वर्णको र त्रिकोण परेको शालग्रामको पूजा गर्दा दाजुभाइको नाश हुन्छ। तलतिर मुख फर्किएको शालग्राम क्षयकारक तथा पुत्रघातक हुन्छ। घोटिएको शालग्रामको पूजा गर्‍यो भने आयु नाश हुन्छ, डर पैदा हुन्छ र कुलकै नाश हुन्छ। त्यस किसिमको शिला अत्यन्त डरलाग्दो र सम्पत्तिनाशक हुन्छ। त्यसैले कुरूप, टुट्टेफुटेका, जलेका, त्रिकोण परेका, भित्र चक्र फुटेका, धेरै रेखा तथा चक्र भएका शालग्रामको पूजा गर्नुहुँदैन। जुन मानिसले शालग्रामशिला बेचेर त्यसको मूल्य लिन्छ त्यो बेच्ने, बेच्नलाई सल्लाह दिने र परीक्षा गर्ने सबै मानिसहरू पापी नै हुन्छन्, तिनीहरूले ठूलो दुःख पाउँछन् र तिनीहरू डरलाग्दो नरकमा पर्छन्। पापदेखि डराउने मानिसले शालग्रामस्वरूप

भगवान् वासुदेवको सम्झना गर्नुपर्छ र चक्रले युक्त भएका ती शिलाहरूको सधैँ पूजा गर्नुपर्छ। यस भुवनमा जति पनि तीर्थ छन्, जति मन्दिरहरू छन् र जति पनि पूजायोग्य पवित्र स्थानहरू छन्, ती सबैको सेवा गर्नाले जुन फल प्राप्त हुन्छ, त्यो फल केवल भगवान् विष्णुको नामकीर्तनले उपलब्ध हुन्छ।

(२७) चक्रअनुसार शालग्रामको पूजन र फलप्राप्ति- चक्रले युक्त भएको शालग्रामको नजिकै बसेर मानिसले जुन स्नान, दान, जप, होम आदि गर्छ, त्यो अक्षय हुन्छ। एक चक्र भएको सुदर्शन, दुई चक्र भएको नारायण, तीन चक्र भएको अच्युत, चार चक्र भएको जनार्दन, पाँच चक्र भएको वासुदेव, छ चक्र भएको प्रद्युम्न, सात चक्र भएको सङ्कर्षण, आठ चक्र भएको पुरुषोत्तम, नौ चक्र भएको नवव्यूह (नौवटा ग्रहहरूको समूह), दश चक्र भएको सृष्टिकर्ता ब्रह्मा, एघार चक्र भएको भगवान् रुद्र र बाह्र चक्र भएको भगवान् सूर्यको शिलामूर्ति हो। यसभन्दा बढी चक्रसङ्ख्या भएको शालग्रामलाई परमात्मा भनिएको छ। त्यस शालग्रामको पूजा गर्नाले कैवल्य (मुक्ति) प्राप्त हुन्छ। जुन मानिसले विष्णुको चक्रले युक्त भएको शालग्रामशिलाको दर्शन गर्छन् ती मानिसहरू दर्शन गर्नाले मात्रै पनि सम्पूर्ण पापबाट मुक्त हुन्छन्।

(आ) शालग्रामशिलाको महिमा

जहाँ शालग्रामको शिला रहन्छ, त्यहाँ भगवान् विष्णु बस्नुभएको हुन्छ। काशीमा गरेको स्नान, जप र दानबाट पाइने फलभन्दा पनि शालग्राम शिलाको पूजाबाट बढी फल प्राप्त हुन्छ। चक्रको चिह्न भएको शालग्राम पूजा गर्नका लागि कुनै गुरु चाहिँदैन। मन्त्र पनि आवश्यक छैन। जप, भावना, स्तुतिपाठ, पूजासामग्री आदिको पनि आवश्यकता हुँदैन। म्लेच्छ देशमै भए पनि पवित्र स्थलमा चक्रले युक्त भएको शालग्रामशिला छ भने त्यसको तीन योजनसम्मको क्षेत्र विष्णुक्षेत्र हुन्छ। त्यस क्षेत्रभित्र शालग्रामको पूजा गर्ने जुन व्यक्तिको मृत्यु हुन्छ, त्यसले सबै पापबाट मुक्त भएर फेरि पृथ्वीमा जन्म लिँदैन। मनुष्यले गरेको ब्रह्महत्या आदि कडा पापहरू शालग्रामको पूजा गर्नाले नाश हुन्छन्। जुन मानिसले शालग्राम शिलाको नजिकै रहेको पवित्र ठाउँमा श्राद्ध गर्छ, त्यसका सबै पितृहरू दिव्य सय वर्षसम्म स्वर्गलोकमा बसेर तृप्त हुन्छन्। शालग्रामशिलाको चारैतर्फ एक कोससम्म यदि कुनै कीरा पनि मऱ्यो भने त्यो अवश्य वैकुण्ठ जान्छ।

(इ) कालीगण्डकीको महिमा

विष्णुलाई आफ्नो गर्भमा धारण गर्ने भएकी हुनाले नै गण्डकी सबै नदीहरूमा श्रेष्ठ मानिएकी छिन् किनकि त्यहाँ भगवान् विष्णु अंशावतार लिएर आफ्नो परिवारसहित बस्नुभएको छ। विष्णु भगवान् सबै देवताका स्वरूप हुनुहुन्छ भने गण्डकी नदी सबै तीर्थस्वरूप छिन्। गण्डकी श्रीजगदम्बा गौरीको पसिनाबाट पैदा भएकी हुन्। त्यसैले गण्डकी नदीमा स्नान गर्नाले अरू तीर्थको भन्दा करोडौँ गुणा बढी फल प्राप्त हुन्छ। तीर्थराज प्रयाग, कुरुक्षेत्र र नैमिषारण्यमा सय पटक स्नान गर्नाले जुन फल प्राप्त हुन्छ, कालीगण्डकीमा एक पटक स्नान गर्नाले मानिसले त्यो फल पाउँछ। जसले कृष्णा गण्डकीको तटमा बसेर श्राद्ध गर्छ, त्यसले आफ्ना सबै पितृहरूको उद्धार गर्छ। गयातीर्थमा पिण्डदान गर्दा उसले जति फल पाउँछ, कृष्णागण्डकीमा एक पटक स्नान गर्दा त्यसभन्दा सयगुणा बढी फल पाएर सम्पूर्ण पाप नाश भई ऊ स्वर्ग जान्छ। त्यसमा पनि जानेर स्नान, जप, होम, पूजा आदि गर्दा उसले कैवल्य अर्थात् मोक्ष प्राप्त गर्छ।

एकादशीका दिन, आइतबार, शुक्ल पक्ष र विशेष गरेर माघ महिनामा जुन मानिसले भक्तिपूर्वक कालीगण्डकीमा स्नान गर्छ, त्यसले अन्य तीर्थको भन्दा करोडौँ गुणा बढी पुण्य फल प्राप्त गर्छ। त्यस नदीको जल स्पर्श गर्नाले मात्रै पनि पशुपक्षी, मनुष्य आदि सबै चर–अचर प्राणीहरू सर्वोत्तम गतिमा पुग्छन्। त्यस नदीको तीरमा गरिएको स्नान, जप, होम, तपस्या आदि सबै अक्षय हुन्छन्। गण्डकी नदीमा शुभकर्म गर्नेहरूले मरेपछि परमपद प्राप्त गर्छन्। मुक्तिधारा र कृष्णा नदीको सङ्गम कागवेनीमा भएको जललाई सर्वोत्तम तीर्थ मानिएको छ। यो तीर्थप्रति देवताहरूको पनि ठूलो लालसा रहेको हुन्छ। त्यस तीर्थमा स्नान गर्ने मानिसले मोहरूपी भोटोलाई फुकाली ज्ञानरूपी भोटो पहिरिएर परमपद प्राप्त गर्छ। त्यस नदीमा स्नान गरेर जुन व्यक्तिले जप, पूजा, हवन आदि गर्छ, त्यसले करोडौँ करोड गुणा बढी अदृष्ट फल पाउँछ। जुन नदीमा आजसम्म भगवान् शङ्करको अनुग्रहबाट सबै देवताहरू आ–आफ्नो अंश लिएर आनन्दसित बसेका छन्, त्यस्ती नदीहरूमा श्रेष्ठ कालीगण्डकीको महत्त्व बताएर सकिँदैन। (हिमवत्खण्ड, प्रकरण– ३, अध्याय– ५५)

४.१५ मुक्तिक्षेत्रको आविर्भाव र महिमा

अघि मुक्ति नाम गरेको पर्वतको बीचमा ब्रह्माले तपस्या गर्नुभएको थियो। त्यहाँ उहाँले अग्निको आवाहन गरेर हवन गर्नुभएको थियो। यद्यपि अग्नि र पानीको परस्पर भित्रभित्रै वैरभाव छ तैपनि त्यहाँ तिनीहरू एउटै शरीर भएर बसेका छन्।

देवताहरू त्यहाँ आएर अत्यन्त प्रसन्न हुँदै पञ्चामृतले युक्त भएको हविलाई बलेको ज्वालाका रूपमा ग्रहण गर्छन्। ब्रह्मा आदि देवताहरू सधैं त्यहाँ बस्छन्। हविलाई ग्रहण गर्ने अग्नि पनि जल र अग्निको मूर्ति लिएर त्यहाँ निरन्तर विराजमान छन्।

विष्णुको मूर्ति जल हो र शिवको मूर्ति अग्नि हो। हवनमा संलग्न भएका ब्रह्माले ती दुबै अग्नि र जलरूप शिव र विष्णुलाई आवाहन गरेर ती दुबैमा हवन गरे अर्थात् जलभित्र रहेको ज्योतिस्वरूपमा हवन गरे। हवि ग्रहण गर्ने इन्द्र आदि दिक्पालहरूले पनि देवस्वरूप भएको त्यस ठाउँमा ब्रह्माको निर्देशन अनुसार आएर उत्तम अग्निकुण्डमा हवन गरे। श्वासरूपी सुराले ब्रह्माले परम पुरुषको ध्यान गरे। मुक्तिका लागि यज्ञ परिपूर्ण भयो। त्यसै समयदेखि यस क्षेत्रको नाम मुक्तिक्षेत्र रह्यो। त्यस क्षेत्रमा भगवान् शिव अग्निरूप लिएर बस्नुहुन्छ। जलका रूप लिने भगवान् विष्णुको सधैं त्यहाँ बसोवास छ। त्यस्तै हवनकर्ता ब्रह्माजी त्यहाँ सधैं रहनुहुन्छ। यस बारेमा बढी बताउन सकिँदैन। जुन ठाउँलाई ऋषिहरू, देवता, गन्धर्व, किन्नर, अप्सरा र सिद्धहरूले कहिल्यै छाड्दैनन् भने त्यस्तो ठाउँको महत्व वयान गर्न सकिँदैन।

चारैथरी प्राणीहरूले त्यहाँ स्नान गरेर शरीरलाई छाडे भने मुक्ति पाउँछन्। त्यसैले त्यस क्षेत्रको नाम मुक्तिक्षेत्र रहेको हो। ज-जसले त्यस ठाउँमा भक्तिपूर्वक स्नान गर्छन्, तिनीहरूले तुरुन्तै मुक्ति पाउँछन् र सम्पूर्ण जन्ममा गरेका पापहरूबाट मुक्त हुन्छन्। जसले ज्येष्ठमहिनाको शुक्लपक्षको दशमीका दिन त्यस क्षेत्रमा गएर स्नान गर्छ, त्यो व्यक्ति करोडौं जन्मदेखि गर्दै आएको पापबाट मुक्त हुन्छ अथवा मकरसङ्क्रान्तिको दिन जुन मानिसले त्यस क्षेत्रमा गएर स्नान गर्छ त्यस व्यक्तिले सम्पूर्ण पापबाट मुक्त भएर परमपद पाउँछ। ज-जसले त्यस क्षेत्रमा सबेर शिवजीको ध्यान गर्दै मन्त्रजप गर्छन्, दान गर्छन् र हवन गर्छन् तिनीहरूले जन्मनु, मर्नुपर्ने आवृत्तिको स्थितिलाई त्याग गरेर ईश्वरीय गति पाउँछन्। स्त्रीजातिहरूले पनि त्यस क्षेत्रमा गएर स्नान गरे भने सम्पूर्ण पापबाट मुक्त भएर उनीहरूले जे चाहन्छन्, त्यही कुरा तुरुन्त पाउँछन्।

त्यस मुक्तिक्षेत्रमा ब्राह्मणलाई ज-जसले भक्ष्य, भोज्य, लेह्य र चोष्य, यी चार किसिमका भोजनहरू गराउँछन्, तिनीहरू सम्पूर्ण पापदेखि मुक्त र आत्मतृप्त भएर आफ्ना वंशका साथ स्वर्गमा बस्न पाउँछन्। त्यहाँ जुन मानिसले भक्तिपूर्वक तर्पण दिएर पितृहरूको श्राद्ध गर्छन् तिनका पितृहरू नरकमा बसेको भएता पनि पापबाट मुक्त भएर तृप्त हुँदै स्वर्गमा जान्छन्। हिमालयका विभिन्न पर्वतबाट पैदा भएका जति पनि नदीहरू छन् तिनीहरू गएर कालीगण्डकीमा मिसिएपछि त्यस सङ्गमस्थलको जल तीर्थ हुन्छ।

कालीगण्डकी नदीसित मिलेका साना नदी अर्थात् खोलाहरूको तीर्थमय सङ्गमस्थलमा स्नान गर्नाले प्राणीहरू सम्पूर्ण पापबाट मुक्त भएर स्वर्ग जान्छन्। जसले ब्रह्मकुण्डमा स्नान गर्छ, त्यो ब्रह्मलोक जान्छ। त्यस्तै रुद्रकुण्डमा स्नान गर्ने व्यक्ति रुद्रलोक पुग्छ। जुन मानिसहरूले चक्रनेमि पहाडको तलतिर रहेको अनन्त नाम गरेको तलाउमा स्नान गर्छन्, ती मानिसहरू पाँच किसिमका महापापबाट मुक्त भएर स्वर्ग जान्छन्। हिमालयको गुफाबाट निस्किएका कञ्चन जल भएका जति पनि सुन्दर नदीहरू छन्, पर्वतका चारैतर्फ फैलिएका ती नदीहरूको प्रवाह पवित्र छ। सप्तगण्डकीलाई पूर्णता दिन तटमा मिल्न आउने कल्याणदायक अरू नदीहरू पनि पवित्र र पुण्यदायक तीर्थ हुन्। (हिमवत्खण्ड, प्रकरण- ३, अध्याय- ५६)

### ४.१६ बद्रीधामको महिमा

पार्वतीको पसिनाको थोपा खस्दा तयार भएकी निर्मलजलवाहिनी अलकनन्दाको प्रवाहक्षेत्रमा रहेको बदरिकाश्रमको महिमा अपरम्पार छ। नारदको वचनले गर्दा हिमालयकी छोरी पार्वतीद्वारा वञ्चित हुनुभएका विष्णुले अत्यन्त लज्जित भएर लज्जाबोध एवं कुण्ठा हटाउनका लागि यस शिखरमा नरनामक ऋषिका साथ दिव्य एक हजार वर्षसम्म तपस्या गर्नुभयो। आजसम्म पनि उहाँले त्यो बदरिकाश्रम पर्वतलाई छोड्नुभएको छैन। त्यस पर्वतमा भगवती पार्वतीकै कृपाबाट उत्तम शिवलिङ्ग प्राप्त गर्नुहुने विष्णुले विधिवत् पूजा गरेर देवीको मन्त्र जप्नुभयो। त्यो शिवलिङ्ग सिद्धरसबाट उत्पन्न भएको हुनाले सम्पूर्ण सिद्धि दिने मानिएको छ। भगवान् विष्णुले आफ्नो कार्यसिद्धिका लागि त्यस सिद्धेश्वरशिवलिङ्गको बारम्बार पूजा गर्नुभएको थियो।

अघि संसारको सृष्टि गर्नका लागि ब्रह्माजीले शिवजीको आराधना गर्नुभएको थियो। त्यसै समयदेखि ब्रह्मालाई सिद्धि दिने त्यस लिङ्गको प्रादुर्भाव भएको हो। जुन शिखरमा पार्वतीको आँखाबाट पसिनाको थोपा झर्‍यो त्यसै स्थानमा स्नान गरेर विष्णुले वयरको रुखमुनि बसेर तपस्या गर्नुभयो। उहाँको पाउदेखि शिरसम्मका अङ्गहरूबाट पसिना निस्किए। जहाँ त्यो पसिना जम्यो त्यसलाई आजसम्म पनि उदककुण्ड भनिन्छ। आज पनि त्यस बदरिकाश्रममा देवता, यक्ष, गन्धर्व र किन्नरहरू आनन्दसित सधैं विचरण गर्दछन्। विभिन्न मुनि, सप्तर्षि र ब्रह्मर्षिहरूले मोक्षको प्राप्तिका लागि श्रद्धाका साथ त्यहाँ भक्तिपूर्वक तपस्या गरेका थिए भने गन्धर्व विद्याका ज्ञाता ब्रह्माजीका छोरा नारदले निरन्तर वीणा बजाएर त्यसै स्थानमा भगवान् विष्णुको सेवा गरेका थिए।

नरनामक शूद्रले वाग्वती नदीका किनारमा रही तपस्या गरेकाले पछि भगवान् नारायणका सहचर नर बनेका थिए। वास्तवमा पुण्यले नै आफूले गरेको कामना सिद्ध हुन्छ। पुण्यले नै कीराहरूले मानिसको जुनी पाउँछन्। पुण्यले नै मानिस देवता बन्छ र शूद्र ब्राह्मण बन्न सक्छ। यसरी पुण्य गरेका शूद्रहरू पनि ब्राह्मणहरूसँगै सुख एवं मुक्ति प्राप्त गर्न सफल हुन्छन्।

हिमालयको शिखरमा रहेको बदरिकाश्रमलाई अहिले पनि पुण्यवान् नरका साथमा रहनुभएका भगवान् विष्णुले छोड्नुभएको छैन। जहाँ सिद्धेश्वर शिवलिङ्गका रूपमा भगवान् शिव विराजमान हुनुहुन्थ्यो त्यहाँ गएर उहाँको पूजा गरी नर र नारायणले तपस्या गर्नुभयो। त्यसै समयदेखि त्यो पर्वत धन्य भएको छ। कुनै समयमा आफ्नो व्रत समाप्त गरेर धर्मात्मा पार्वती भगवान् सिद्धेश्वरको पूजा गर्न बदरिकाश्रममा जानुभएको थियो। त्यसबेला पार्वतीको सिउँदोबाट जुन पसिना झऱ्यो त्यो नदी भएर बग्यो। नदीलाई देखेर सिद्धेश्वर महादेवले अत्यन्त खुसी हुँदै त्यस नदीमा स्नान गर्नुभयो र उहाँले त्यसको नाम अलकनन्दा राख्नुभयो। त्यसपछि पार्वतीलाई सम्बोधन गर्दै भन्नुभयो– हे देवी ! तिमी साक्षात् अमृतमय प्रवाहको रूप लिएर अलकबाट उत्पन्न भएकी हुँदा तिमीलाई अलकनन्दा भनेको छु। तिमी तीनै लोकलाई पवित्र तुल्याउने नदी हुनेछौ।

ब्रह्मा आदि देवता र अरू ऋषिहरूले पनि त्यस अवसरमा विधिपूर्वक अलकनन्दाको पूजा गरेर स्नान गरे। जसले अलकनन्दामा स्नान गरेर बदरिकाश्रममा रहेका भगवान्को दर्शन गर्छ त्यसको पुण्यफल बताईदैछ। त्यस्ता मानिसहरू सात जन्मसम्म गरेका पापबाट मुक्त हुन्छन् र यो लोक छोडेपछि वंशसहित विष्णुको लोकमा जान्छन्। शिवस्वरूप विष्णु भगवान्को स्मरण गर्दै ज्ञान र भक्तिले युक्त भएर जुन मानिस पवित्र विष्णु भगवान्को निवासस्थल त्यस बदरीनाथ पर्वतमा सवार हुन्छ त्यसले पाइलैपिच्छे वाजपेय र अश्वमेध यज्ञ गरेको फल प्राप्त गर्छ। अन्तमा त्यो दश हजार सूर्यजस्तो चम्किलो विमानमा चढेर सुखपूर्वक विष्णुलोक जान्छ। जुन मानिसले उदकुण्डको जलमा स्नान गरेर बदरीनाथ भगवान्को दर्शन गर्छ त्यो साक्षात् विष्णुको अवतार हो र जीवन्मुक्त व्यक्ति हो। जसले पवित्र अलकनन्दामा स्नान गरेर तपस्यामा तत्पर भगवान् विष्णु तथा सिद्धेश्वर शिवको दर्शन गर्छ त्यसको पुण्यफल बताइसक्नु छैन। त्यस्तो व्यक्ति सात जन्मसम्म गरेका पापबाट मुक्त हुन्छ र संसार छोडेपछि परमगतिमा पुग्छ। जसले सिद्धेश्वर नाम गरेको महालिङ्गको एकपटक मात्रै पनि दर्शन गर्छ त्यो व्यक्ति शरीरसहित त्यसै लिङ्गमा लीन हुन्छ। संसारलाई त्याग गरेपछि डरलाग्दो भवचक्रमा त्यसले जन्म लिनुपर्दैन र त्यसको मरण हुँदैन।

(हिमवतखण्ड, प्रकरण– ४, अध्याय– ५७)

### ४.१७ विष्णुको बुद्धका रूपमा नेपालमा अवतार र शान्तिसन्देश

उग्र चरित्र भएका दानवहरूको घोर युद्ध गर्ने इच्छालाई पूर्णतया शमन गरिदिनका लागि शिवजीद्वारा नारायलाई शान्तिका देवता बुद्धका रूपमा अवतार लिन अनुरोध गरिँदा नारायणले बुद्धावतार लिनुभयो। उहाँले चातुर्यद्वारा दानवहरूलाई वैराग्यको उपदेश दिएर देवताहरूलाई युद्धको विभीषिकाबाट जोगाउनुभएको र युद्धोन्माद शान्त भएपछि बुद्धको उपदेशअनुसार दानवहरूको पातालप्रयाण भएको विषयसँग सम्बद्ध इतिवृत्त यस शीर्षकभित्र प्रस्तुत गरिएको छ।

#### (क) विष्णुको बुद्धका रूपमा नेपालमा अवतार

स्वर्गबाट लखेटिएका दानवहरूले शुक्राचार्यको सम्मतिअनुसार हिमालयअन्तर्गत नेपालक्षेत्रमा रहेको ज्ञानतीर्थमा रही विष्णुको आराधना गर्दै घोर तपस्या गरे। कसैले पाउको अगाडिको भाग भुईंमा टेक्यो भने कसैले कुर्कुच्चो टेकेर तपस्या गऱ्यो। कोही हाँसको आसनमा बसे भने कसैले मयूरासन तथा कुक्कुटासन अँगाले। यसरी दानवहरूले दिव्य हजार वर्षसम्म नाना रूप लिएर विष्णुको आराधना गर्दै धेरै समयसम्म तपस्या गरे। त्यसपछि भगवान् विष्णुले उनीहरूलाई दर्शन दिने विचार गर्नुभयो। भगवान् विष्णुको त्यो भावना बुझेर सदाशिवले विष्णुलाई तपाईं नारायणका रूपमा त्यहाँ दर्शन दिन नजानुहोस् अपितु शान्त, ज्ञानमुद्राले सम्पन्न, बुद्धको अवतार लिएर दानवहरूलाई शान्त गर्नुहोस्। यसरी शिवजीका वचन सुनेर भगवान् विष्णुले शाक्यवंशका राजा शुद्धोदनकी रानी मायादेवीको गर्भमा प्रवेश गर्नुभयो। १० महिनासम्म मायादेवीको गर्भमा रहँदा तीन युग बितेछन् अनि कलियुगको आरम्भ भएछ। त्यसबेला ग्रहहरू उत्तम स्थानमा थिए, मुहूर्त राम्रो थियो र लोकको रक्षाका लागि अब यही उचित समय हो भन्ने विचार गरेर भगवान् विष्णु शुद्धोदनका छोरा सिद्धार्थका रूपमा जन्मनुभयो।

मार्गशुक्ल चतुर्थी तिथि, बुधवार र श्रवण नक्षत्र भएको समयमा भगवान् नारायणले आफूलाई बुद्धका रूपमा प्रकट गराउनुभयो। आकाशमा पुष्पवृष्टि भयो, बाजा बजे, गन्धर्वले गाए, अप्सराहरू नाचे। उहाँ जन्मिएको दिन संसार अत्यन्त आनन्दित भयो, सम्पूर्ण प्राणीहरूलाई सुखसम्पत्तिदायक कल्याण प्राप्त भयो। त्यसपछि ब्रह्मा आदि देवताहरूले स्वर्गबाट आई भगवान् बुद्धका रूपको दर्शन गरे। उहाँका आँखा ठूला थिए, उहाँको स्वरूप शान्त थियो र उहाँ सम्पूर्ण लक्षणले युक्त हुनुहुन्थ्यो। गोलकाँक्रीजस्ता ओठ थिए र हँसिलो अनुहार थियो। लामा सुडौल हात थिए, दिव्य शङ्खको जस्तो घाँटी थियो,

सुन्दर गाला थिए, उत्तम किसिमको नाक थियो, फैलिएको छाती थियो र पातलो कम्मर थियो। उहाँका घुँडासम्म पुग्ने कमलजस्ता हात थिए, चरणकमलका नङबाट ज्योति फैलिएको थियो। उहाँ ध्यानपूर्वक हेर्नुहुन्थ्यो र दयाशील हुनुहुन्थ्यो।

उहाँ आफू सुतेको शय्यालाई आफ्नो कान्तिले प्रकाशित तुल्याइरहनुभएको थियो। उहाँ खरानीभित्र आगो रहेझैं आमा र बाबुलाई मख्ख पारेर त्यहाँ बस्नुभएको थियो। उहाँ शुक्ल पक्षमा चन्द्रमा दिनानुदिन बढेझैं बढ्नुभयो। तीन वर्ष पुगेपछि गुरुले उहाँको मुण्डन गराए। सात वर्ष पुगेपछि विधिपूर्वक अग्निको हवन गरेर उहाँको छिट्टै व्रतबन्ध गरियो। उहाँलाई ब्रह्माले दण्ड दिनुभयो, शिवजीले भिक्षापात्र दिनुभयो र फेरि बृहस्पतिले गेरु रङ्गले रङ्गाएको कपडा दिए।

सिद्ध र ऋषिहरूका साथ रहेका ब्रह्माजी उहाँको दर्शन पाएर अत्यन्त प्रसन्न हुनुभयो। इन्द्रले खुसी भएर उहाँलाई छाता दिए र ओढाए। वरुण र वायु प्रसन्न भएर दुबैतिर सँगै बसी स्तुति गर्दै उहाँलाई चमर हम्किरहेका थिए। दिक्पालहरू र बाँकी रहेका अरूले पनि प्रसन्न भएर अरिष्टहरू हटाउँदै उहाँको सेवा गरेका थिए।

(ख) भगवान् बुद्धको शान्ति सन्देश–

छाता ओढेका, बौद्ध गणको अगाडि लागेका भगवान् बुद्ध हातमा चक्र, लट्ठी र भाँडो लिएर विस्तारै विस्तार भूमिमा रहेका कीरालाई हेरी हेरी बाटमा पैताला टेकेर राक्षसहरू तपस्या गरेर बसेको ठाउँमा जानुभयो। हिमवत्खण्डको ज्ञानतीर्थको सुन्दर तटमा हजारौं वर्षसम्म गरेको तपस्याले गर्दा अत्यन्त दुब्ला भएका भक्त तपस्वी दैत्यहरूलाई भगवान्ले देख्नुभयो। त्यसपछि दयालु भगवान् खुसी हुँदै वरदान दिनका लागि तिनीहरूसित भन्न लाग्नुभयो।

बुद्धले भन्नुभयो– हे भक्त दैत्य हो ! तिमीहरूले हजारौं वर्षदेखि चाहना गरेको कुरा के हो ? अब वर माग। तिमीहरूको स्नेहरूपी बन्धनले बाँधेर तपस्वीले दोहिने म कामधेनुलाई तिमीहरूकी भक्तिरूपी सेविकाले तानेर ल्याएकी छन्। तपस्यारूपी बाच्छो भएको भर्खर ब्याएको म कामधेनु हुँ। जे कुराको इच्छा छ त्यही त्यही कुरा मबाट सक्दो दोहन गर। जसले ममाथि दृढ प्रेम राखेको छ त्यस्ता भक्तहरूले जे–जे चाहन्छन्, उनीहरूको भक्तिरूपी सम्पत्ति अनुसार तिनलाई त्यही त्यही म दिन्छु।

तपस्वी दैत्यहरूले भने– देवताका पनि देवता बुद्धरूप लिने विष्णुलाई नमस्कार छ। हे कृपाशील ! सम्पूर्ण कुरा दिने बुद्धरूप हजुरलाई नमस्कार छ। यदि हजुर हामीहरूलाई वर दिन आउनुभएको हो भने हामी हजुरसित माग्छौं। हे भगवन् ! हामीलाई उत्कृष्ट वरहरू दिनुहोस्। हे भगवन् ! जुन पराक्रमबाट हामी चर, अचर र सबै प्राणीहरूलाई आफ्नो वशमा गरेर तीनै लोकको राज्य गर्न सक्छौं त्यस किसिमको तीनै लोकलाई मथन गर्न सक्ने सबैभन्दा उत्कृष्ट पराक्रम हामीलाई दिनुहोस्। हे भगवन् ! स्वभावले हामी दैत्य हौं, हामी स्वर्गको राज्य चाहन्छौं, हाम्रो यही वरको कामना छ।

तपस्वी दानवहरूको यो कुरा सुनेर कसरी लोकको रक्षा गर्न सकिएला भनेर चिन्ता गर्ने भगवान् बुद्धले आफ्नो मायाद्वारा दैत्यहरूलाई मोहित तुल्याएर सम्बोधन गर्दै भन्नुभयो– मलाई त आश्चर्य लाग्यो किनभने हजुरहरू तपस्वी भएर पनि यसरी मोहित हुनुभएको रहेछ भने सामान्य मानिसहरू किन मोहित नबनून्। म हजुर तपस्वीहरूलाई के भनौं ? ज्ञानयोगमा डुबेका हजुरजस्ता तपस्वीहरूले मायामा बाँधिएको राज्यलाई चाहन्छन् र ? अर्थात् चाहँदैनन्। आफ्नो शरीरभित्र रहेको सुखलाई छोडेर जो मानिस राज्यको सुख चाहन्छ, त्यो चाहना भनेको काम, क्रोध आदि षड्वर्ग र रोगले ग्रस्त भएको शरीरको यातनाका लागि मात्रै हुन्छ। ईश्वरलाई आफ्नो शरीरबाट हटाएर जसले अर्को कुरा चाहन्छ त्यो मानिस दैवद्वारा ठगिएको मूर्ख हो। राज्यमा धेरैथरी पापहरू हुन्छन्, धेरैथरी दोषहरू हुन्छन्, त्यहाँ अन्याय र दण्डनीति हुन्छ। त्यसैले राज्यलाई त्याग गर्नुपर्छ। जहिलेसम्म राजाहरू सुख सम्झिएर राज्य गर्छन् त्यही समयसम्म उनीहरू अन्यायपूर्वक अत्यन्त अधम काम गरिरहेकै हुन्छन्। त्यो सबै यातना हो। जसले सुख र आफ्नो अङ्गको पुष्टिका लागि प्राणीहरू मारेर आनन्दसँग मासु खान्छ त्यो व्यक्ति नरक पर्छ। हे दैत्य हो ! जुन अधम राजाहरूले अर्काकी पत्नी र अर्काको सम्पत्तिको चाहना गर्छन्, सुख पाईकन पनि दुःख भोग्ने ती राजाहरू नरक पर्ने व्यक्तिहरू हुन्। जुन राजाले उन्मत्त भएर ब्रह्मस्व हरण गर्छ त्यसको विषले गर्दा त्यो राजा चन्द्रमा र सूर्य रहेसम्म नरकमा गएर बस्छ। त्यसैले तपस्वीहरूले राज्य भन्ने कुरा सधैं छोड्नुपर्छ। यो कुरा बुझ्ने व्यक्तिले हिंसा, क्रोध, सुख र राज्यलाई छोडिदिन्छन्।

सन्धि, विग्रह आदिको चिन्ताले गर्दा राज्यमा पनि ठूलो दुःख हुन्छ। जहाँ छोरादेखि पनि डराउनुपर्छ त्यस्तो सुखलाई के सुख मान्ने ? त्यसैले त्यो सबै कुरा छोडेर सात्विक मार्गलाई अवलम्बन गर्नुपर्छ। योगमार्गद्वारा धैर्यशाली पुरुषले ठूलो सुख पाउँछ। त्यसकारण द्रोह भनेको गर्दै गर्नुहुँदैन, हिंसा पनि गर्नुहुँदैन। जसले उत्तम स्थानको चाहना राख्छ त्यसले ती सबै अवश्य छोड्नुपर्छ। अहिंसा नै सबैभन्दा ठूलो धर्म हो, अहिंसा नै सबैभन्दा ठूलो यज्ञ हो, अहिंसा नै सबैभन्दा ठूलो व्रत हो, अहिंसा नै सबैभन्दा उत्तम बलि हो। हिंसा भनेको अर्काको सम्पत्ति हो भनेर ठान्नुपर्छ, हिंसा सबैभन्दा ठूलो वेदना हो, हिंसा सबभन्दा ठूलो

पाप हो, हिंसा आयुलाई नाश गर्ने परम तत्त्व हो। हिंसाले तुरुन्त आयु, कीर्ति, यश र धनलाई नाश गर्छ र नरकगामी बनाउँछ। त्यसैले हिंसा छोड्नुपर्छ। जो अविवेकी बनेर एकपटक मात्रै पनि अर्काको हिंसा गर्छ त्यसले यस लोक र परलोकमा हजार पटकसम्म दुःख पाउँछ। त्यसैले विद्वान्‌ले आफ्नो आत्मा र अर्काको आत्मालाई निरन्तर बराबर ठानेर विवेकको उपयोग गरी पशुहिंसा गर्नुहुँदैन। विकृत अवस्थामा रहेका इन्द्रियहरू नै अत्यन्त शत्रु हुन् भनेर विद्वान्‌हरूले बुझ्नुपर्छ। तिनीहरूलाई बारम्बार शरीरभित्र नै नियन्त्रण गर्नुपर्छ।

विकृत इन्द्रियलाई जुन मानिसले दमन गर्छन् ती पुरुषहरू पापमा लिप्त हुँदैनन्, पापबाट मुक्त हुन्छन्। त्यसो गर्दा मानिसहरूले सबैभन्दा उत्तम सुख तुरुन्त प्राप्त गर्छन्। त्यसैले योगीले सधैँ आफ्नो शरीरमा रहेका इन्द्रियरूपी शत्रुलाई दमन गरेको हुन्छ। राजा दुर्लभ सुख पाएँ भनेर तुरुन्त प्रसन्न हुन्छ। उसको शरीरमा सुख रहेको हुन्छ, तर धेरै पापहरू पनि रहेका हुन्छन्। यो कुरा बुझेर सुखको चाहना गर्ने पुरुषले पापरूपी शत्रुलाई नाश गर्नुपर्छ। शरीरमा तीर्थहरू छन्, शरीरमा नै आफूले चाहेका देवताहरू छन्, शरीरमा नै सुख छ। हे योगी दैत्य हो ! यो कुरा साँचो हो। संसारको बीज भनेको अज्ञान हो। जसरी उज्यालो भएपछि अन्धकार हट्छ त्यसरी नै संसारको बारेमा थाहा पाएपछि अज्ञानबाट मानिस हट्छ। अज्ञान भएपछि रोग, धर्म, अधर्म, तज्जन्य कीर्ति, अकीर्ति आदिको उत्पत्ति हुन्छ। धर्म र अधर्मको कारणले गर्दा पुरुषको शरीर पैदा हुन्छ।

हे दैत्य ! शरीर भएपछि त्यसमा सम्पूर्ण दुःखहरू गाँसिन्छन्। त्यसैले दुःख नाश गर्न चाहने हो भने शरीर धारणा गर्ने इच्छा गर्नुहुँदैन। संसारको तत्त्व बुझेपछि अज्ञान निवृत्त भएर जान्छ। अज्ञान निवृत्त भएपछि रोगादिको सम्भावना हुँदैन। रोगादि शान्त भएपछि पुरुषका पुण्य र पापको नाश हुन्छ। तिनीहरूको नाश भएपछि फेरि शरीरसित जोडिनुपर्दैन। शरीर नभएपछि सबै किसिमका दुःखहरूले पीडा दिन सक्दैनन्। क्लेशबाट मुक्त भएको हुँदा ऊ प्रसन्न हुन्छ त्यसैलाई मुक्त भनेर भनिन्छ। त्यसैले प्राणीहरूका सबै दुःखहरू अज्ञानमूलक हुन्छन्। ज्ञानबाट त्यो अज्ञान हट्छ, कर्मबाट होइन। ज्ञानविना पुरुषहरूको पुण्य र पापको नाश हुँदैन, मोक्षको इच्छा राख्ने पुरुषले सधैँ ज्ञानको अभ्यास गर्नुपर्छ। जसरी पुछेपछि ऐना सधैँ सफा हुन्छ त्यसरी नै ज्ञानको अभ्यास गऱ्यो भने पुरुषहरूको बुद्धि सफा हुन्छ। हे तत्वज्ञ दैत्य ! ज्ञानरूपी अमृतले तृप्त भएर कृतकृत्य बनेका योगीहरूको गर्नुपर्ने भन्ने कुनै कार्य हुँदैन। दुबै लोकमा पनि त्यसले गर्नुपर्ने कर्तव्य बाँकी रहँदैन, सबैको प्रियपात्र भएर त्यो व्यक्ति यसै लोकमा मुक्त हुन्छ। पापलाई नाश गर्ने पवित्र वस्तु ज्ञान बाहेक अर्को कुनै हुँदैन। त्यसैले अभ्यास गरेर विस्तार विस्तार मानिसले आत्मालाई चिन्नुपर्छ।

व्रत, दान, तपस्या, यज्ञ, संन्यास, तीर्थ, आश्रम र योगले पुण्य र पापलाई विनाश गर्न सक्दैनन्। ज्ञानविना मानिसहरूले कैवल्य सुख पाउँदैनन्। जो मानिस पाप र पुण्यका कर्मले बाँधिएको छ त्यस्तो व्यक्तिहरूको मुक्ति कसरी हुन्छ ? शरीरधारी व्यक्तिले असल र खराब कर्म त्याग गर्न सक्दैनन्। हिँड्दा वा बस्दा त्यो कर्म अवश्य नै हुन्छ। अधर्म नाश भएपछि धर्म नगरे पनि पुण्य प्राप्त हुन्छ। धर्म त्याग गर्नाले अधर्म पैदा हुन्छ। त्यसैले मानिस तटस्थ कसरी हुन सक्छ ? तसर्थ ज्ञानरूपी तरवारले मानिसले चाहेर वा नचाहीकन गरेका कर्मका बन्धनलाई छिनाल्नुपर्छ, त्यसपछि उसको आत्मा शुद्ध हुन्छ। जसरी खूबसित बलेको आगाले चीसो र सुकेका घाँसलाई समाप्त पार्छ त्यसरी नै ज्ञानरूपी आगाले गरेका राम्रा नराम्रा कर्मलाई तुरुन्त नाश गर्छ। जस्तो ज्ञान हो, त्यस्तै ध्यान हो, ध्यान र ज्ञानलाई बराबर मानिएको छ।

ज्ञान र ध्यानमा तत्पर भएको व्यक्तिले सुख र मोक्ष पाउँछ। ज्ञानबाट अनुपम ऐश्वर्य प्राप्त हुन्छ, ऐश्वर्यबाट उत्तम सुख उपलब्ध हुन्छ। ज्ञानले गर्दा नै कर्मलाई छोडेर मरेपछि मोक्ष प्राप्त हुन्छ। सबै यज्ञहरूमध्ये ज्ञानयज्ञ उत्कृष्ट भनिएको छ। नित्य शुद्ध, प्रसन्न र सम्पूर्ण दोषबाट मुक्त भई आफ्नो शरीरमा सम्पूर्ण तीर्थ, देवता र सुखलाई धारण गर्ने योगीहरू सम्पूर्ण संसारलाई छाडेर सधैँ आनन्दित हुन्छन्। मनरूपी सुरोले योगीले श्वासरूपी हवनीय द्रव्यलाई ध्यानजन्य सुखरूपी अग्निमा हवन गर्छ र त्यसपछि ऊ मुक्त हुन्छ। त्यसैले यदि आफ्नो हित चाहन्छौ भने सुख नाम गरेको राज्य भन्ने वस्तुलाई छोडेर पाताल जाओ। हे भक्त हो ! आ–आफ्नो देशमा बसेर आ–आफ्नो लोकलाई रक्षा गर्दै मैले भनेका कुराको राम्रोसित चिन्तन गर।

यसरी विभिन्न किसिमका ज्ञानसँग सम्बद्ध उपदेशहरू बुद्धभगवान्‌का मुखबाट सुनेर दैत्यहरू हर्षित भए। तपस्वी ती दैत्यहरूले त्यो उपदेशलाई साँचो ठानी पाताल जानका लागि बुद्धावतारलाई तुरुन्त नमस्कार एवं स्तुति गरे। भगवान्‌ले भन्नुभयो- "हे दैत्य हो ! तिमीहरू पाताल जाओ। त्यहाँ गएर भक्तिपूर्वक शिवजीको आराधना गर्दै उहाँमा नै मन लगाओ।" भगवान्‌का यी कुरा सुनेर उहाँका तर्कपूर्ण वाक्यहरूबाट प्रेरित हुँदै दैत्यहरूले त्यसैलाई आफ्नो कल्याण ठानी आनन्दित भए। पहिले तपस्वी दैत्यहरूले शिरले बुद्ध भगवान्‌लाई ढोगेर परिक्रमा गरे। त्यसपछि प्रसन्न र हर्षित हुँदै उनीहरू पाताल गए। यसरी बुद्धावतारबाट सबै देवताहरू आनन्दित भए। त्यसै समयदेखि हर्षविभोर हुँदै देवताहरू हिमालयको उत्तरतर्फ सदाका लागि आफ्नो वासस्थानको स्थापना गरेर स्वर्ग गए। (हिमवतखण्ड, प्रकरण– ४ अध्याय– ६४ देखि ६५)

### ४.१८ नेमुनिको तपस्या र नेपालको नामकरण

अघि मरीचि ऋषिका छोरा, सम्पूर्ण प्राणीमाथि दया गर्ने र महातपस्वी ने नाम गरेका एक बुद्धिमान् मुनि थिए। उनी सबै प्राणीहरूमाथि दया र सधैं कृपा गर्थे, दानधर्ममा सधैं तत्पर हुन्थे, सत्य बोल्थे र जितेन्द्रिय थिए। जहाँ योगिनी रहेकी थिइन् त्यसै ठाउँमा उनले बाह्र वर्षसम्म आश्चर्यजनक कठिन तपस्या गरे। नेमुनिले सप्तर्षिहरूका साथ पहाडको गुफामा बसेर त्वष्ट्राले बनाएका स्तुतिहरू पढ्दै योगिनीको पूजा गरे। भक्तिपूर्वक गरेको तिनको तपस्याबाट योगिनीदेवी प्रसन्न हुनुभयो र तिनलाई वर दिनका लागि प्रादुर्भाव हुनुभयो।

देवीले भन्नुभयो- हे भक्त ने मुनि ! तिमीले निरन्तर गरेको तपस्याबाट म प्रसन्न भएँ। हे छोरा ! एकचित्त भएर सुन, म तिमीलाई वर दिन्छु। हे मुनि ! तिमी यसै शरीरले भक्तहरूका बीचमा आजदेखि प्रलयसम्म सिद्ध भएर बस। त्यसपछि ममा नै विलीन हुनेछौ। हे बाबु ! तिमीले धर्मद्वारा सुरक्षित यस पशुपतिको धार्मिक क्षेत्रलाई धर्मपूर्वक सधैं पालना गर। त्यसपछि मानिसहरूले तिम्रै नामबाट तीनै लोकमा श्रेष्ठ रहेको यस क्षेत्रलाई नेपाल भनेर सबैतिर भन्नेछन्। सात द्वीपहरूमध्ये जम्बूद्वीप सबैभन्दा उत्तम मानिन्छ। त्यसमा पनि वाराणसी क्षेत्र अझै उत्तम छ। त्यसभन्दा पनि चारगुणा श्रेष्ठ नेपालक्षेत्र छ। साक्षात् पशुपतिको धामका रूपमा रही सबै कामना पूर्ण गर्ने यस क्षेत्रले मानिसहरूलाई इच्छाअनुसारको भुक्ति र मुक्ति दिन्छ। हे छोरा ! तिमी सधैं यहाँ बसेर भक्तिपूर्वक पशुपतिको पूजा गरी यस क्षेत्रको रक्षा गर। धेरै वर्ष बितेपछि त्यहाँ जलले परिपूर्ण भएकी वाग्वती नाम गरेकी नदीको प्रादुर्भाव हुनेछ।

देवीबाट वर प्राप्त गरेर उहाँको आज्ञा अनुसार नेमुनिले पाशुपतक्षेत्रलाई निरन्तर धर्मपूर्वक सुरक्षा गरे। मानिसहरूलाई सम्झाई-बुझाई धर्मका नियमहरू बताउँदै व्रत, उपवास, पूजा आदिद्वारा नेमुनिले पाशुपत क्षेत्रको रक्षा गरे। त्यसपछि देवता, असुर तथा मानिसले नेपालको निकै प्रतिष्ठा गरे। देवीको प्रसादबाट वरदान पाएका जितेन्द्रिय नेमुनिले तपस्या गरेको हुँदा यस क्षेत्रलाई नेपाल भनियो। (हिमवत्खण्ड, प्रकरण- ४, अध्याय- ६९)

### ४.१९ नेपालको महिमा

गण्डकी र कौशिकीको बीचमा नीलकण्ठको तटमा सबैलाई सुख दिने प्रसिद्ध नेपाल नाम गरेको देवताहरूको क्षेत्र छ। यो हिमालयको सुन्दर शिखर हो। त्यसभित्रका पर्वतको र विशेष गरी पुराना पुण्यतीर्थको निकै महत्त्व छ। मेनासहित रही देवताको पूजा गरेको हुनाले ब्रह्माबाट वर प्राप्त गरेर पर्वत हिमालयले सय सन्तान पैदा गरे।

उशीरबीज, ओच्छत्रक, उज्जयन्त, कासुन्द, चित्रह्रद, सुह्रद, केतुमान्, मणिमान्, गोमान्, कामीर, धेनुमान्, सुनाभ, चक्रनाभ, व्याघ्रवान्, पुष्पक, वैतरण, सुनेमि, श्यामाक, वृषभ, चक्र, द्रोण, काकन्द, ककुद, स्कन्द, कुब्ज-निकुब्ज, मुकुन्द, खाण्डव, शिवकूट, सेवेल, पारिमात्र, मृगेन्द्र, श्रेष्ठ पर्वतराज मुञ्जवान्, सिद्धाश्रम, दोलाद्रि, मणिधातु, चन्द्रवान्, पुण्यवान्, कालाद्रि, ऋष्यवान्, सर्वोषधि, विशालाद्रि, चन्दन पर्वत आदि रहेका छन्। शैलराज स्वर्ग सोपान शक्रमार्गका नामले प्रसिद्ध यो उशीरबीज पर्वतको दक्षिणमा छ। उत्कृष्ट यी पर्वतहरूका बीचमा हे अगस्त्य मुनि ! पाशुपत महाक्षेत्र रहेको छ। उनीहरूका साथ तीर्थहरू, लिङ्गहरू, देवताहरूका साथै नेपालक्षेत्र सधैं अत्यन्त सुशोभित रहेको छ।

कोशीको उत्तम तीरमा आदिलिङ्ग रहेको छ। नेपालमा रहेको त्यो तीर्थ कुशेश्वर नामले प्रसिद्ध छ। देवतीर्थ र कोशी नदीको सङ्गममा भीमसेनले पूजा गरेका भीमेश्वर महादेव हुनुहुन्छ। कौशिकी नदीको सङ्गममा रहेको कल्याणदायक भीमतीर्थ जहाँ छ, त्यहाँ भीमसेन पनि बस्नुभएको छ। यहाँ काफीश्वर महादेव आफ्ना गणहरूका साथै ठूलो दहभित्र निरन्तर बस्नुभएको छ। यसैगरी पर्वतको शिखरमा आफ्ना गणहरूका साथ गन्धर्वले पूजित भएर स्फटिकेश्वर रहनुभएको छ।

यसै नेपालक्षेत्रमा सबै मानिसहरूको इच्छा पूर्ण गर्ने चण्डेश्वर भगवान् चण्डिकाका साथ जहाँ रहनुभएको छ। यहाँ चौंसठ्ठी गणलाई साथमा लिएर भक्तहरूलाई सम्पत्ति दिने पूर्णावतार धनेश्वर, देवताहरूले सेवा गरिएका विकटेश्वर महालिङ्ग, इन्द्रको इच्छा पूर्ण गर्ने इन्द्रेश्वर र प्रमथ आदि गण र देवताहरूका साथ तिलेश्वर भगवान् रहनुभएकाले गङ्गा र सरस्वती नदीको बीचमा रहेको नेपाल देश सुहाएको छ। सबै देवताहरूका साथ भक्तलाई वर दिने चम्पकेश्वर महादेव, उत्तम प्रभातीर्थमा सबैले पूजा गरिएका भगवान् रामेश्वर, गन्धर्व र अप्सराका साथ नटरम्भेश्वर, घर्घरा नदीको तीरमा देवी र कालका गणहरूका साथ भगवान् कालेश्वर रहनुभएकाले नेपाल अत्यन्त गरिमामय बनेर विराजमान भएको छ। यहाँ सम्पूर्ण ऋषिहरूले सेवा गरिएका भक्तलाई वर दिने उद्दालकेश्वर, देवताद्वारा सेवा गरिएका गोपालेश्वर, चम्पकेश्वर एवं उन्मत्तेश्वर भगवान्को उपस्थितिले गर्दा नेपाल गौरवान्वित भएको छ। यस क्षेत्रमा देवता, सिद्ध र ऋषिहरूद्वारा सुशोवित नन्दिकेश्वर भगवान् भैरवीका साथ बस्नुभएकाले नेपाल सुहाएको छ।

प्रमथगणद्वारा भक्तिपूर्वक सेवित गोखुरेश्वर महादेव, देवता र सिद्धद्वारा सेवित पाण्डुकेश्वर राक्षसद्वारा पूजित कूटेश्वर एवं पहाडको सुन्दर गुफाभित्र वनस्पतिहरूद्वारा सुसज्जित असितेश्वर महादेव रहनुभएकाले नेपालको शोभा बढेको छ। पृथ्वीका सम्पूर्ण प्राणीहरूलाई संहार गरेर धर्मधारा नदीको तटमा जलभित्र भैरवेश्वर महादेव रहनुभएकाले नेपाल महिमामय भई विराजमान छ। देवता र प्रमथगणका साथ वनस्पतिद्वारा सुसेवित ब्रह्मेश्वर, यक्ष, गन्धर्व र किन्नरहरूद्वारा सेवा गरिएका शतरुद्रेश्वर महादेव, सुन्दर पहाडको शिखरमा किरातद्वारा सुसेवित कार्तिकेयेश्वर महादेव, भृगुतीर्थको गुफामा सुन्दरीहरूका साथ काकेश्वर महादेव रहनुभएको छ। मणिपर्वतमाथि गन्धर्वद्वारा सेवित मणिचूडेश्वर भगवान् यहाँ सधैं वास गर्नुहुन्छ। योगको सिद्धि दिने योगेश्वर र यक्षहरूद्वारा सुसेवित नारायणेश्वर महादेव पनि जलभित्र रहनुभएको छ। त्यसैले यो नेपाल अत्यन्त सुहाएको छ।

योगतीर्थको नजिकै देवताहरूद्वारा सुसेवित ज्योतिर्लिङ्गेश्वर भगवान् सधैं रहनुहुन्छ, चित्रह्रद नामका तलाउको तल्लो भागमा ऋषिहरूले सेवा गरिएका वागीश्वर महादेव रहनुभएको छ, प्रमथगणका साथ कीलेश्वर महालिङ्गका रूपमा भगवान् शिव रहनुभएको छ। वीरभद्र महातीर्थमा दुनियाँलाई वर दिने वाल्मीकेश्वर भगवान् सधैं रहनुहुन्छ, मङ्गलेश्वर भगवान् र विमलेश्वर भगवान् आफ्ना गणहरूका साथ सधैं बस्नुहुन्छ, ऋषिहरूको आश्रमको नजिकै ऋषिद्वारा सेवित अनन्तेश्वर भगवान् ऋषिहरूका साथ बस्नुहुन्छ, त्यसकारण नेपाल अत्यन्त शोभामय भई विराजमान छ।

विश्वरूपेश्वर भगवान्, सोमेश्वर भगवान् र यक्षहरूद्वारा सेवित भक्तलाई वर दिने गोभराटेश्वर महादेव निरन्तर बस्नुभएको हुँदा यो नेपाल अत्यन्त सुहाएको छ। देवताहरूद्वारा सेवा गरिएका भृङ्गेश्वर महादेव प्रमथगणका साथ सधैं यहाँ बस्नुहुन्छ। कार्तिक स्वामीलाई लिएर बस्नुभएकी रुद्राणीका साथ भक्तलाई वर दिन त्रिलिङ्गेश्वर महादेव पनि यहाँ रहनुभएको छ। संसारलाई भय पैदा गर्ने कुपितेश्वर भगवान् कात्यायनीका साथ सधैं यहाँ रहनुहुन्छ। गणेशलाई लिएकी गौरीसँग सर्वेश्वर भगवान् महालिङ्गका रूपमा रहनुभएको छ। रुद्रतीर्थको उत्तम तटमा महालिङ्गका रूपमा गोलोकेश्वर विराजमान हुनुहुन्छ र यहीं नै चन्दनपर्वतको तल्लो भागमा देवता र राक्षसको इच्छा पूर्ण गरिदिने चन्दनभराटेश्वर महादेव प्रमथगणहरूका साथ विराजमान हुनुभएको छ। नेपालमा नै यक्षतीर्थको नजिकै उशीरबीज पर्वतको टाकुरामा यक्षहरूलाई वाञ्छित फल दिने यक्षेश्वर महादेव र विष्णुपदी नदीको तटमा चण्डिकेश्वर महादेव लिङ्गका रूपमा चण्डिकाका साथ रहनाले पनि नेपाल अत्यन्त सुहाएको छ।

पाशुपत महाक्षेत्रमा धर्मद्वारा सेवित महालिङ्गका रूपमा शिव रहनुभएको छ। चन्द्रभागा नदीको उत्तम तटमा पितृहरू र देवर्षिहरूले सधैं सेवा गरिएका भगवान् गोकर्णेश्वर महालिङ्गका रूपमा विराजमान हुनुभएको छ। रुद्रधारा नदीको तटमा चारै पुरुषार्थको फल दिने कोटेश्वर भगवान् आफ्ना गणहरूका साथमा रहनुभएको छ। उत्तम पाशुपतक्षेत्रमा बाणेश्वर भगवान् विराजमान हुनुभएको छ। यसैगरी नन्दीसार भन्ने उत्तम शिवक्षेत्रमा ज्ञानेश्वर महालिङ्ग रहेको छ। उत्तम पाशुपतक्षेत्रमा हिमालयको भक्ति, प्रीति र इच्छाले शैलेश्वर महादेव विराजमान हुनुभएको छ। वाग्वतीको प्रवाहमा स्वयम् रुद्रले स्थापना गर्नुभएको जलेश्वरको महालिङ्ग सधैं विराजमान छ। सम्पूर्ण प्राणीहरूको इच्छा पूर्ण गर्ने गुह्येश्वर महालिङ्ग प्रमथ आदि गणका साथ सुशोभित छ। यसैले यो नेपाल विश्वका सामु पवित्र भूमिका रूपमा र देवभूमिका रूपमा प्रख्यात भई विराजमान भएको छ।

नेपालक्षेत्रकै वाग्वतीको पूर्वपट्टि सिद्धाचलको जङ्गलमा किरातेश्वर महादेव हुनुहुन्छ। यहाँ भगवान् पशुपति पशुरूप लिएर कुनै समयमा बस्नुभएको थियो। यसै ठाउँमा ज्योतीरूपेश्वर भगवान् हुनुहुन्छ र भस्म एवं धूलाले स्नान गर्ने भस्मेश्वर भगवान् पनि त्यहीं हुनुहुन्छ। भुवनका मालिक रुद्रमन्दिरेश्वर भगवान् प्रमथगणहरूका साथ विराजमान हुनुभएकाले पाशुपतक्षेत्र धन्य भएको छ। यसै पाशुपतक्षेत्रमा देवताहरूले स्थापना गरेका लिङ्गहरू सुशोभित छन् र इच्छा पूर्ण गरिदिने दिक्पाल र ग्रहहरूद्वारा स्थापित नौवटा लिङ्ग पनि यहीं छन्।

इच्छा सिद्धि गर्ने सिद्धेश्वर महालिङ्ग र पशुपतीश्वर ज्योतिर्लिङ्ग, एवं देवताहरू पीठहरूका साथ जहाँ विराजमान हुनुहुन्छ, त्यो नेपाल अत्यन्त गरिमामय छ। सधैं स्वर्ग तथा मोक्ष दिने र इच्छा लागेको फल दिने नेपालको पाशुपतक्षेत्र धन्य छ। यसै ठाउँमा करोडौं लिङ्गहरू छन् र विभिन्न किसिमका तीर्थहरू रहेका छन्। यसैगरी विभिन्न किसिमका पापलाई हरण गर्ने नदीहरूका कारण यो नेपाल महिमामय बनेको छ।

नेपालअन्तर्गत पाशुपतक्षेत्रका जति पनि प्राणीहरू छन् ती चाहे पशु वा पक्षीरूपमा होऊन् ती सेवनीय छन्। महापद्मको आकारमा रहेको यस नेपाल क्षेत्रमा कसैले नजानीकन पनि प्राण त्याग गर्दछन् भने ती व्यक्ति स्वर्गमा जान्छन्, यसमा सन्देह छैन। त्यसैले यो अत्यन्त पवित्र, पुण्यभूमि नेपाल धन्य छ किनकि यहाँ साक्षात् पशुपतिनाथको लिङ्गका रूपमा विराजमान हुनुहुन्छ। जुन मानिसले ज्ञानयोगले यस पशुपतिको क्षेत्रमा शरीर त्याग गर्छ त्यो मानिस यो लोक छोडेर शिवलोकमा जान्छ।

वन-जङ्गलले युक्त भएको सम्पूर्ण पृथ्वी दान गर्दा जुन फल मिल्छ, पृथ्वीमा रहेका गाईहरूलाई ब्राह्मणहरूलाई दान गर्दा जुन पुण्य मिल्छ। पृथ्वीमा जति पनि देवताका मूर्ति छन् ती सबैको दर्शन गर्नाले जुन पुण्य मिल्छ त्यो पुण्य नेपालमा भगवान् पशुपतिको एकपटक पूजा गर्नाले प्राप्त हुन्छ। (हिमवतखण्ड, प्रकरण- ४, अध्याय- ७०)

### ४.२० पाशुपतक्षेत्र एवं पाशुपती पुरीको महिमा

#### (क) पाशुपतक्षेत्रको महिमा

कोटेश्वरदेखि दक्षिणपट्टि तिलेश्वर पर्वतसम्म रहेको मृगेन्द्रशिखरलाई कामदा भूमि भनिन्छ। विकटेश्वर महालिङ्गदेखि पूर्व र त्यसै पर्वतदेखि पश्चिमपट्टि चन्दनभराटेश्वरसम्मको भूभागलाई उत्तमोत्तम क्षेत्र भनी जान्नुपर्दछ। योगधारा नदी र तिनको ईशानतर्फको विष्णुतीर्थसम्मको क्षेत्रलाई मोक्षदायक क्षेत्र जान्नुपर्दछ। आग्नेय दिशाको गोदावरी महातीर्थदेखि हरितीर्थसम्मको सम्पूर्ण क्षेत्र पवित्र मानिएको छ। माथि बताइएका तीर्थहरूको माझमा नेपालको उत्तम पाशुपतक्षेत्र छ। त्यहाँ गई भगवान् पशुपतिको आराधना गर्ने प्राणीहरूले भुक्ति, सुख, भूमि र मुक्ति सजिलैसित पाउँछन्। एक योजनभित्रको चारै दिशाको क्षेत्र प्रशंसनीय छ। यस क्षेत्रलाई भगवान् रुद्रले सेवा गरिएको क्षेत्र भनी जान्नुपर्दछ। भगवान् पशुपतिनाथ यस क्षेत्रमा आफ्नो माझमा गुप्ता नाम गरेकी देवी, प्रमथगण र योगिनी गणलाई राखेर ज्योतिर्लिङ्गस्वरूपमा विराजमान हुनुहुन्छ। यो पाशुपतक्षेत्र नेपालभूमिको माझमा सम्पूर्ण कामना पूर्ण गर्ने र भुक्ति-मुक्तिदायक उमामहेश्वरको क्षेत्र हो।

वज्रयोगिनी देवी र भगवान् पशुपतिनाथका माझको यो क्षेत्र सिद्धिदायक उत्तम योगक्षेत्र हो। यहाँ मानिसहरूले जुन-जुन कामना लिएर उपासना गर्छन् ती ती कामनाको फल पाउँछन्। योगाभ्यास गर्ने योगीहरूले त्यहाँ योगसिद्धि पाउँछन्। विष्णु र पशुपतिका बीचको क्षेत्रलाई हरिहर क्षेत्र भनिन्छ। त्यहाँ साँढे र गरुडका साथ शिव र विष्णु विराजमान हुनुभएको छ। त्यस क्षेत्रमा मानिसले राम्रा-नराम्रा जे-जस्ता काम गर्छन् ती सबै अक्षय हुन्छन्। ती ती कर्मको फल प्राप्त गरेर मानिसहरू राम्रो कामबाट अत्यन्त उत्तम गतिमा र नराम्रो कामबाट अत्यन्त अधम गतिमा प्राप्त हुन्छन्। ब्रह्मलोक आदि उत्तम लोकका भोक्ताहरू नै यस पाशुपतक्षेत्रमा जन्मन्छन् र शिवका साथ आनन्दपूर्वक बस्छन्। स्वर्गमा रहेका देवताहरूले पनि सबै शिवजीका गणहरूको जहाँ दर्शन पाउँछन् त्यस्तो सधैं भुक्ति र मुक्ति दिने पाशुपतक्षेत्र धन्य छ। यसै शैवक्षेत्रमा लक्ष्मीलाई प्राप्त गर्न तपस्या गर्नुभएका विष्णुले एक वर्ष बितेपछि सिद्धिक्षेत्रको प्रभावले गर्दा लक्ष्मीलाई पाउनुभयो।

यहाँ लोकको उद्धारका लागि तपस्वी ब्रह्माले योगद्वारा तीनवटा पवित्र कुण्ड बनाउनुभएको छ। यहाँ कश्यप ऋषिले शिवजीको पूजा गर्दै तपस्या गरे। त्यस्तै दक्षप्रजापति, मार्कण्डेय नाम गरेका महामुनि, अश्वत्थामा, बलि, व्यास, हनुमान्, कृपाचार्य, राम र विभीषण यी चिरञ्जीवीहरूले पनि यहाँ आई तपस्या गरे। पाशुपतक्षेत्र सबै क्षेत्रभन्दा धन्य र उत्तम क्षेत्र हो। यहाँ मरीचि, अङ्गिरा, प्रह्लाद, पुलह, ऋतु, भृगु र अत्रिले सधैं भगवान् महेश्वरको पूजा गर्छन्। भगवान् पशुपति सम्पूर्ण नरनारीको इच्छा पूरा गर्न आठ किसिमका लिङ्गको रूप लिएर सधैं विराजमान हुनुभएको छ। त्यहाँ पशुपतिका अनुग्रहले गर्दा नागको शरीरबाट पैदा भएको श्रेष्ठ श्लेष्मान्तक वन रहेको छ। यहाँ सिद्धगणका साथ निरञ्जन दत्तात्रेय भगवान्‌लाई योगसिद्धि, बल, शक्ति प्रदान गर्ने गोपदतीर्थ विराजमान छ। यहाँ विनायक र क्षेत्रपाल भगवती गुह्येश्वरी देवीको पावन क्षेत्रको रक्षा गर्दै विराजमान छन्। यसै ठाउँमा कोटिकोटि सिद्धदेवहरूले सधैं सेवा गरिएकी गुह्यकाली योगिनी विराजमान हुनुभएको छ। यहाँ गुह्येश्वरीको नजिकै करोडौं गणले युक्त भएकी ब्राह्मी भगवती सधैं विराजमान हुनुहुन्छ। यस क्षेत्रमा गुह्येश्वरीको नजिकै करोडौं गणले सेवा गरिएकी माहेश्वरी भगवती रहनुभएको छ। यसैले यो क्षेत्र संसारको बीचमा अत्यन्त शोभामय भई विराजमान छ।

गुह्येश्वरीको स्थान नजिकै करोडौं गणले युक्त भएकी कौमारी योगिनी रहनुभएको छ। गुह्येश्वरीको मन्दिर नजिकै करोडौं गणले युक्त भएकी नारसिंही रहनुभएको छ। गुह्येश्वरी भगवतीको नजिकै करोडौं गणद्वारा सेवा गरिएकी भगवती शिवदूती नित्य निवास गर्नुहुन्छ। यसरी त्यहाँ रहेका मातृकाहरूले आ-आफ्नो वाहनमा सवार भएर यहाँका दशै दिशाका पवित्र स्थानहरूको रक्षा गरिरहेका छन्। गुह्येश्वरीको दक्षिणद्वारमा रहेका गणहरू भगवान् पशुपतिका गणहरूसित मिलेर उक्त पाशुपतक्षेत्रको अहोरात्र रक्षा गरिरहेका छन्। गुह्येश्वरीको द्वारमा द्वारपाल बनेर आफ्नो परिवारका साथ भगवान् सिद्धिगणेश विराजमान हुनुभएको छ।

मनुष्यको इच्छा पूर्ण गर्ने क्षेत्रपाल देवता त्यस क्षेत्रको रक्षा गर्दै त्यहाँ बसेका छन्। सतीको छातीबाट उत्पन्न भएकी, सधैं भुक्ति र मुक्ति दिने वत्सला देवी त्यहीं नै विराजमान हुनुहुन्छ। यस पाशुपतक्षेत्रमा भक्तहरूलाई कल्याण र मङ्गल दिने मङ्गलादेवी सधैं विराजमान हुनुहुन्छ। यसै पाशुपतक्षेत्रमा सम्पूर्ण इच्छाअनुसारको फल दिने राजराजेश्वरी देवी आफ्ना

गणहरूसहित रहनुभएको छ। जलमा प्रतिबिम्ब हेरेर भविष्यको सूचना गर्ने कुण्ड पनि त्यहीँ छ। मानिसहरूको कल्याणका लागि नै अघि ब्रह्माजीले यो कुण्ड बनाउनुभएको हो। सबै प्राणीहरूमा दया गर्ने र पशुपतिको ध्यानमा तत्पर हुनुभएका पितामह चन्द्रमा पनि सधैँ पाशुपतक्षेत्रमा विराजमान हुनुहुन्छ।

विरूपाक्ष नामक भैरव आफ्ना सम्पूर्ण गणहरूका साथ पाशुपतक्षेत्रको रक्षा गर्दै सानन्द त्यहाँ विराजमान हुनुभएको छ। भगवान् अनन्त भक्तिपूर्वक सबैको आदर नमस्कार प्राप्त गर्दै आफ्ना परिवारहरूका साथ यस क्षेत्रको रक्षा गर्दै त्यहाँ रहनुभएको छ। देवताहरू सपरिवार भगवान् पशुपतिनाथको पश्चिम ढोकामा पाशुपतक्षेत्रको रक्षा गर्दै सधैँ बस्ने गर्छन्। सबै प्राणीको उपकार गर्ने लम्बोदर गणेश भक्तिपूर्वक त्यस भेगको रक्षा गर्दै पाशुपतक्षेत्रमा विराजमान हुनुभएको छ। त्यहाँ अनुपम तेज भएका दण्डपाणि भैरव सधैँ प्रसन्न भएर पशुपतिका द्वारहरूको रक्षा गर्दै बस्नुभएको छ। सबै प्राणीहरूमाथि दया गर्ने वरुणदेवता आफ्ना गणहरूका साथ त्यस क्षेत्रको रक्षा गर्दै विराजमान हुनुभएको छ। सतीहरूलाई वरदान दिने र भक्तहरूको वाक्सिद्धि गराउने वागीश्वरी देवी त्यहाँ आफ्ना गणहरूका साथ विराजमान हुनुभएको छ। त्यहाँ सबै लोकलाई वर दिने महान् देवता नारायण सहर्ष त्यस क्षेत्रको पालन गर्दै बस्नुभएको छ। त्यस्तै उत्तरपट्टिको ढोकामा आफ्ना गणहरूलाई साथमा लिएर सम्पूर्ण देवताहरू त्यस क्षेत्रको रक्षा गर्दै बसेका छन्।

सबैलाई उत्तम वर दिने महावीर नन्दिकेश्वर उत्तरद्वारमा त्यस क्षेत्रको रक्षा गर्दै विराजमान हुनुभएको छ। भगवान् शङ्करको पाउको सेवामा तत्पर महात्मा कुबेर पनि यक्षगणहरूका साथमा रहेर त्यस क्षेत्रको पालना गर्दै विराजमान हुनुभएको छ। कुबेर सधैँ भगवान् शङ्करका कोषको रक्षा गर्नुहुन्छ र गदा हातमा लिएर रहनुभएको छ। भक्तले चाहेको फल दिने विजयादेवी योगिनीहरूका साथ सधैँ त्यस पाशुपतक्षेत्रमा विराजमान हुनुहुन्छ। त्यस पाशुपतक्षेत्रमा शङ्करको पाउको सेवामा संलग्न योगाभ्यासी सिद्धहरू सधैँ विराजमान हुन्छन्। त्यहाँ शिवरूप भएका दिक्पालहरू सबै दिशाको रक्षा गर्दै विराजमान भएका छन्। त्यसैले पाशुपतक्षेत्र स्वर्ग तथा मोक्षको फल दिने धाम हो। इन्द्र, अग्नि, निर्ऋति, वरुण, वायु, कुबेर र ईशानहरू छुट्टाछुट्टै रहेर त्यस क्षेत्रको रक्षा गरिरहेका छन्। भक्तहरूलाई वर दिने उन्मत्त, असिताङ्ग, रुरु, काल, संहारक, क्रोध, आनन्द र चण्ड नामक आठ भैरवहरू आफ्ना शक्ति र गणले सहित भएर पशुपतिको चारै दिशामा रहेका छन्। पशुपतिबाट वर पाएर उहाँको पाउको सेवामा लागेका ग्रहहरू पनि पाशुपतक्षेत्रको रक्षाका निमित्त त्यसै ठाउँमा रहेका छन्। त्यसै ठाउँमा शङ्करका प्रिय मित्र शिवस्वरूप वासुकिनामक नागराज सधैँ विराजमान हुनुहुन्छ। भगवान् पशुपतिको क्षेत्रमा रहेका नागराज वासुकिलाई सर्वप्रथम भक्तिपूर्वक नमस्कार गरेर मात्र यात्रीले पशुपतिको दर्शन गर्दा उत्तम फल प्राप्त गर्दछ।

पाशुपतक्षेत्र पवित्र क्षेत्र हो र देवताहरूको घर हो। कामना पूर्ण गर्ने र मोक्षफल दिने यो क्षेत्र देवताहरूको दिव्यपुरी हो। पाशुपती पुरीलाई धर्मदेवले सधैँ रक्षा गरिरहेका छन्। यस पुरीमा भगवान् शङ्करको कृपाले सबै पापहरू नाश भएर जान्छन्। शङ्करका तेजले तेजस्वी बनेको यो नगर कल्याणदायी छ, सुवर्णमय यो भूभाग कल्याणकारक छ र एक योजनसम्म फैलिएको यो पाशुपतक्षेत्र धन्य छ। महान् सहस्रदल कमलको पत्रमा यो नगर नगर अडिएको छ र त्यसको कर्णिकामा भगवान् पशुपति विराजमान हुनुभएको छ। यो पाशुपती पुरी देवता, राक्षस, मानिस र भक्तहरूलाई सधै सबै कुरा दिने साक्षात् भगवान् शङ्करको कैलाश हो। यसलाई माहेश्वरीपुरी भनिन्छ। वास्तवमा यो साक्षात् पार्वतीको रूप हो।

(ख) पाशुपती पुरीको महिमा

जहाँ भगवान् पशुपतिनाथ महाप्रभु ज्योतिर्लिङ्गको रूप लिएर सधैँ विराजमान हुनुभएको छ, त्यो पवित्र नगर धन्य छ। चौधै भुवनमा सबैभन्दा दुर्लभ भएको सर्वश्रेष्ठ पवित्र यो नगरी सबैभन्दा धन्य छ। जम्बूद्वीपमा भगवान् रुद्र बस्नुभएका दुईवटा नगरी छन्– एउटा काशीनगरी र अर्को पाशुपती नगरी। यी दुबैमा देवताहरूका धेरै मन्दिर रहेका छन्। यो पाशुपती पुरी काशीभन्दा चौगुना पूजनीय छ। काशीमा प्राणीहरूले खालि मोक्ष पाउँछन्, उमा र महेश्वरको यस नगरीमा धर्म, अर्थ, काम र मोक्ष चारै पुरुषार्थ प्राप्त गर्न सक्छन्। त्यसैले पाशुपती पुरी काशीभन्दा महत्वपूर्ण मानिएको हो। गुह्येश्वरी देवीको स्थानबाट पैदा भएको तेजोमय चतुर्मुख लिङ्ग यहाँ छ। हिमालयको दक्षिणपट्टि रहेको हुँदा यस पाशुपती पुरीलाई उत्तरकाशी भनिएको हो।

गङ्गाजीको उत्तरपट्टि हिमालयको काखमा रहेको यो नगर भगवान् शङ्करका लागि अत्यन्त प्रिय छ। यस नगरीलाई शङ्करले एकछिन पनि छाड्नुहुन्न। उत्तराखण्डको पुण्यभूमिमा रहेको हुँदा यसलाई उत्तरकाशी भन्छन्। गौरीश्वर भगवान् पशुपति, बलिलाई ध्वंस गर्ने विष्णु, चञ्चल वासुकि नाग, ब्रह्मा र शेषनागहरूको विश्रामस्थान भएकाले यो पाशुपती पुरी अत्यन्त महिमान्वित छ।

यस पशुपतिक्षेत्रका सारा स्त्री–पुरुषहरूलाई स्वर्गमा रहने देवताहरूले महेश्वरका गणका रूपमा हेर्छन्। यस क्षेत्रको आसपासमा सज्जनहरू स्वच्छन्द भएर विचरण गर्छन्। स्वर्गका पुरुषहरूले यिनीहरूलाई निर्भय भएर हिँड्ने शङ्करजस्तै देख्छन्। पापरहित शरीर भएका, धर्म, अर्थ, काम एवं मोक्ष चारै पुरुषार्थले युक्त भएका शिवपुरीमा बस्ने मानिसहरू अत्यन्त धन्य छन्। स्वर्गमा बस्ने पुरुषहरूले पशुपतिको नगरमा बस्ने मानिसहरूलाई तीन आँखा भएका, त्रिशूल लिने, ध्वजामा गोरुको चिह्न भएका, शिरमा जटा र मुकुटमा चन्द्रमा लगाउने शिवका गणका रूपमा हेर्छन्। स्वर्गमा बस्ने देवताहरू पनि चतुर्वर्ग फलप्राप्तिका लागि भगवान् रुद्रका साथै यस राज्यमा बस्न चाहन्छन्। अरू क्षेत्रमा बस्ने मानिसहरूले करोडौँ जन्मको पुण्यसञ्चयबाट मात्र मोक्षदायिनी यस पाशुपती पुरीमा बस्ने सौभाग्य पाउँछन्।

दुर्लभ मानिसको चोला पाएर पनि जुन मानिस पाशुपतक्षेत्रमा पुग्दैन त्यो भाग्यहीन पुरुष हो। जुन प्राणीहरू वाग्वतीमा स्नान गरेर परमेश्वर ज्योतिर्लिङ्गको भक्तिपूर्वक दर्शन गर्दैनन्, ती दुःखका पात्र पशु हुन्। जानेर होस् वा नजानीकन होस्, जसले नेपाल शब्दको उच्चारण गर्छ त्यो व्यक्ति त्यस दिन गरेको सम्पूर्ण पापबाट मुक्त हुन्छ।

नेपालमा शरीर छाड्ने व्यक्ति सम्पूर्ण पापबाट मुक्त भएर पशुपतिनाथको कृपाले आनन्दसित शिवलोकमा जान पाउँछ। जसको आफ्नो जिब्राले पशुपति र पाशुपती पुरी शब्दहरूको उच्चारण गर्दछ त्यो सबै पापबाट मुक्त हुन्छ। जुन बुद्धिमान् मानिसले रीस, मोह, डर, अभिमान, ख्यालठट्टा अथवा भक्तिभावले पशुपति शब्दको उच्चारण गर्छ त्यो निश्चय नै मुक्त हुन्छ।

डर, आपत्ति, रोग, सङ्ग्राम तथा सङ्कटका समयमा जसले पशुपति भन्ने चार अक्षरको शब्द उच्चारण गर्छ त्यसको रक्षा शिवजीले गर्नुहुन्छ। एकपटक मात्रै भए पनि भगवान् पशुपतिको नगर पाशुपतक्षेत्रमा गएर जसले भक्तिपूर्वक पशुपति प्रभुको दर्शन गर्छ त्यस व्यक्तिले सम्पूर्ण यज्ञ र तीर्थाटन जे जति फल पाउने हो त्यो पाउँछ। त्यसले सम्पूर्ण यज्ञबाट पैदा हुने पुण्य प्राप्त गर्छ र सम्पूर्ण उपवासबाट प्राप्त हुने पुण्य फल पाउँछ। जसले पाशुपतक्षेत्रमा पाँच रात बसेर वाग्वतीको जलले स्नान गरी भक्तिपूर्वक शिवजीको पूजा गरेर उहाँको मन्त्रजाप गर्दछ र जितेन्द्रिय भएर उहाँमै मन लगाएर ध्यान गर्छ त्यस्तो सात्त्विक व्यक्तिले परमपद प्राप्त गर्छ।

जुन मानिसले भक्तिपूर्वक गुह्येश्वरीको पूजा गरेर एकपटक मात्र भए पनि उहाँको मन्त्रजाप गर्दछ भने त्यसले सम्पूर्ण पुण्यकर्म गर्ने मानिस र योगीहरूले पाउने पुण्यफल पाउँदछ। त्यस्तो मानिस अन्त्यमा गएर वचन तथा मनले थाहा पाउनै नसकिने ज्योतिर्मय शिवस्वरूपमा विलीन हुन्छ। पाशुपत क्षेत्रको जुनसुकै भागमा प्राण त्याग गर्ने मानिसले पापबाट मुक्त भएर शिवलोक प्राप्त गर्दछ। पाशुपतक्षेत्रमा एकपटकमात्रै भए पनि जसले श्राद्ध गर्छ त्यो मानिस बीस कुलको उद्धार गरेर शिवलोकमा जान्छ। पाशुपतक्षेत्रमा रहेको आर्यातीर्थको नजिकै गएर जसले पिण्डदान गर्छ त्यो व्यक्ति करोडौँ कुललाई उद्धार गरेर शिवलोकमा आनन्दपूर्वक बस्छ। जसले वाग्वती नदीको जल घैँटाले उबाएर काँधमा बोकेर लगी पशुपतिलाई स्नान गराउँछ त्यो व्यक्ति आफूले चढाएको जलमा जति थोपाहरू छन् त्यति वर्षसम्म करोडौँ कुलको उद्धार गरेर रुद्रलोकमा आनन्दपूर्वक विराजमान हुन्छ। जसले त्यस धरातलमा शिवलाई सम्झिएर ब्राह्मणहरूलाई भोजन गराउँछ त्यो व्यक्ति सम्पूर्ण सांसारिक सुखभोग गरेर शिवलोक जान्छ।

चारै पुरुषार्थ प्रदान गर्ने पशुपतिको नगरी धन्य छ जहाँ आगोमा तताएको सुनजस्तो भगवान् पशुपतिको ज्योतिस्वरूप महालिङ्ग रहेको छ। सूर्यले संसारलाई उज्यालो पारेझैँ ज्योतिर्लिङ्गको तेजले दिव्य पाशुपती नगरी रातदिन चम्किएको छ। सुवर्णमय देशमा सुवर्णदीपको ज्वालाजस्तै गरी अव्यक्त भएर रहेको उत्तम पशुपतिको लिङ्ग रातदिन प्रकाशित भइरहेको छ। योगीहरूको मनमा जसरी ज्योतिको ज्वाला रहेको हुन्छ र त्यो ज्वाला योगीहरूले मात्र देख्न सक्छन्, त्यसरी नै जसले पशुपतिको भक्तिपूर्वक दर्शन गर्छन् तिनीहरूको हृदयमा मात्र भगवान् पशुपतिको ज्योतिपुञ्ज विराजमान हुन्छ। देवताहरूले पनि प्रत्यक्ष रूपमा देख्न नपाउने ज्योतिस्वरूप भगवान् शिवलाई जसले प्रत्यक्ष दर्शन गर्न पाउँछन्, त्यस्ता नेपालका मानिसहरू धन्य छन्। जसले सधैँ गएर भक्तिले विभोर हुँदै पशुपतिको दर्शन गर्छ त्यो व्यक्ति जीवन्मुक्त हुन्छ। अयोध्या, मथुरा, माया (हरिद्वार), काशी, काञ्ची, अवन्तिका र द्वारावती आदि सातवटा महत्त्वपूर्ण पुरीहरू मोक्षदायक मानिएका छन्। ती पुरीहरूभन्दा पनि पाशुपती पुरी अझ बढी पुण्यदायी छ जहाँ भगवान् पशुपतिको ज्योतिर्लिङ्ग विराजमान भएको छ।

सत्ययुगमा काशीनगरी, द्वापरयुगमा अवन्तिका पुरी, त्रेतायुगमा मायाा र अयोध्या मोक्षदायी मानिन्छन्। कलियुगमा द्वारका र मथुरापुरी बढी पुण्यदायी मानिएका छन्। प्रत्येक युगमा ती महत्त्वपूर्ण पुरीहरू स्वर्ग तथा मोक्षदायक हुन्छन्। ती पुरीहरूभन्दा पनि पाशुपती पुरी सर्वश्रेष्ठ छ किनभने यस पुरीले सबै युगमा चारै पुरुषार्थ र महापुण्य प्रदान गर्दछ। सत्ययुगमा पाशुपती पुरीको नाम सत्यवती थियो। त्रेतायुगमा यसको नाम तपोवती भयो। द्वापरयुगमा यसको नाम मुक्तिसोपान थियो र

कलिमा यस पुरीलाई नैपालिका पुरी भनिन्छ। यस पुरीको पूर्वतर्फबाट सम्पूर्ण नदीहरूमा श्रेष्ठ भएकी र सम्पूर्ण कामना पूर्ण गर्ने शिवगङ्गा नदी बगेकी छिन्। पाशुपती पुरी उत्तरकाशी हो र यसभन्दा अर्को कुनै स्वर्ग पृथ्वीमा छैन। यो उत्तरकाशी धर्म, अर्थ, काम एवं मोक्षनामक चारै पुरुषार्थ प्रदान गर्ने पृथ्वीमा रहेको अमरालय हो। (हिमवत्खण्ड, प्रकरण- ४, अध्याय- ७१-७२)

### ४.२१ विरूपाक्षको जन्मकथा, नेमुनि र विरूपाक्षको तीर्थयात्रा-सन्दर्भ

कोशी नदीको तटमा मरीचिका सुपुत्र नेमुनि तपस्या गरिरहेका थिए। सायंकाल थियो, एकजना मानिस आएर भक्तिपूर्वक उनलाई प्रणाम गरे। नेमुनिले शरीरभरि कुष्ठरोग भएका ती मानिसलाई सोधे- तिमी को हौ ? यस्तो रुग्ण अवस्थामा जंगली हिंस्रक जनावरले भरिएको डरलाग्दो यस वनमा किन र कसरी आयौ ? तिमी किन कुष्ठी भयौ ? तिमीले जनै लगाएका छौ तर तिम्रो यो दुर्दशा किन ?

आगन्तुकले भने- म कुलीन ब्राह्मण धर्मशर्माको पुत्र हुँ। म पूर्वजन्मका कर्मले पाप गर्ने, मासु खाने, अगम्यागमन गर्ने महापापी भएँ। वेदको अध्ययन गर्ने कुलमा पैदा भएर पनि म मदिरापान गर्ने, परस्त्रीसंसर्ग गर्ने र धर्मकर्मबाट पतित भएँ। स्वेच्छचारिणी पत्नीको पापले समेत मलाई झन् डुबायो। फलस्वरूप सबैको हेलापात्र भएँ। मलाई अकस्मात् कुष्ठरोग आइलाग्यो। त्यसको पीडाले छटपटिएर पृथिवीमा भौंतारिएँ। देश-देशान्तर डुल्दै हिमालयमा पुगेँ। त्यसपछि आज म लीलावती र कौशिकीको प्रवाहक्षेत्रमा कुशेश्वरको समीपमा रहेको आदिलिङ्गमा आइपुगेको छु। यहाँ आएर हजुरको दर्शन पाएँ।

हे मुनि ! म वैदिक कुलमा जन्मिएर पनि दैवको खटनले गर्दा ठूलो पाप गर्ने भ्रष्टचारी भएको छु। मेरा सबै अङ्ग अतिशय पापले लिप्त भएका छन्, घाउ नै घाउ छ, कुष्ठरोग लागेको छ र म अति नै आत्तिएको छु। विभिन्न देशहरू घुम्दै भाग्यले म यहाँ आइपुगेँ। हे तात ! कसरी म खपिनसक्नु यो पापबाट मुक्त हुन्छु ? कसरी मेरो यो शरीर पापरहित बन्छ ? त्यो कुरा मलाई बताउनुहोस्। हे विभो ! पापरूपी आगामा म डढेको छु, दुःखरूपी समुद्रमा म डुबेको छु, उपदेशको कृपारूपी डोरीले बाँधेर मेरो उद्धार गर्नुहोस्।

सिद्ध ऋषिले भन्नुभयो- हे बाबु ! तिमीले साँचै कुरा बतायौ, तिमी पापी नै हौ, पापाचारी हौ, पूर्वजन्मको कर्मले गर्दा तिमी पापी भयौ, यसमा शङ्का छैन। हे ब्राह्मण ! आफ्ना भयङ्कर पाप नाश गर्नका लागि तीर्थभ्रमण गर। तीर्थको जलस्पर्श गर्नाले सबै पापहरू नाश हुन्छन्। लिङ्गहरूको दर्शन गर्नाले विभिन्न पापहरूबाट मुक्ति पाइन्छ। तिनीहरूलाई तिमीले छोयौ भने पहिले गरिएका पापबाट तिमी लिप्त हुनेछैनौ।

विरूपाक्षले भने- हे शुभचिन्तक मुनि ! कुन तीर्थमा विधिपूर्वक पहिले कसरी स्नान गर्नुपर्छ ? हे सर्वज्ञ ! लिङ्गहरूको कसरी स्पर्श गर्नुपर्छ ? कसरी लिङ्गको मैले पूजा गर्ने ? कुन विधिले लिङ्गहरूलाई स्नान गराउने ? हे शुभ उपदेशक ! यो सब विधि मलाई यथार्थ बताउनुहोस्।

नेमुनिले भन्नुभयो- सर्वप्रथम स्नान गर अनि शरीरमा खरानी घसी रुद्राक्ष धारण गरेर सन्ध्या गरी भक्तिपूर्वक लिङ्गको पूजा गर। प्रत्येक तीर्थमा गई स्नान गर, शिवलिङ्गको दर्शन गर। साँझमा बत्ती बालेर जागरण गरी तिमीले भक्तिभावनापूर्वक लिङ्गहरूको कथा सुन्ने र मनन गर्ने काम गर्नुपर्छ। यहीं मेरा क्षेत्रमा साढे तीन करोड पन्ध्रसय तीर्थहरू छन्। यस क्षेत्रमा देवता, दानव र गन्धर्वले वर प्राप्तिका लागि पूजा गरिएको चौसठ्ठी लिङ्गहरू छन्। हे बाबु ! मेरो नामले प्रसिद्ध भएको नेपालभूमिमा पनि देवीको कृपाले अनेक पुण्यस्थलहरू पैदा भएका छन् भन्ने कुरा बुझ। हे बाबु ! पहिले तिमी भक्तिपूर्वक यो कौशिकी नदीमा स्नान गर, अनि आदिलिङ्गको भक्तिपूर्वक पूजा गर, त्यसपछि तिमी मलाई साथमा लिएर अन्यत्र जाऊ। जहाँ जहाँ तीर्थ छन्, त्यहाँ त्यहाँ स्नान गर। ती ठाउँमा रहेका लिङ्गहरूको सधैं भक्तिपूर्वक पूजा गर। ती तीर्थमा एक रात शिवजीको भक्तिभाव गर्दै बिताऊ। तिम्रो इच्छा पूर्ण हुनेछ, पापबाट मुक्त हुनेछौ, उत्तम वर पाउनेछौ।

विरूपाक्ष नेमुनिको यस्तो कुरा सुनेर उनको निर्देशन अनुसार उनलाई साथमा लिएर तीर्थमा गएर स्नान, लिङ्गपूजन एवं जाग्राम गर्न थाले। सर्वप्रथम उनले माघ कृष्ण चतुर्दशीको मघानक्षत्रले युक्त भएको दिन आफ्नो इच्छा पूर्ण गरिदिने दुर्गातीर्थ नाम गरेको तीर्थमा स्नान गरे। नेमुनिको उपदेश अनुसार पञ्चोपचार विधिले उनले शिवमन्त्र उच्चारण गर्दै भक्तिपूर्वक कुशेश्वर आदिलिङ्गको पूजा गरे।

यसैगरी उनी अरू त्रिसठ्ठी शिवलिङ्गहरूको दर्शन गर्न नेमुनिका साथ गएका छन्। अहिले हामी उक्त कुशेश्वरतीर्थमा रहेका शिवलिङ्गहरूको र आजको भूगोलअनुसार सिन्धुली, दोलखा, सिन्धुपाल्चोक, काभ्रेपलाञ्चोक, नुवाकोट, धादिङ, मकवानपुर, भक्तपुर, ललितपुर र काठमाडौंमा रहेका अरू त्रिसठ्ठी शिवलिङ्गहरूको संक्षेपमा तालिका प्रदर्शन गरी परिचय प्रदान गर्दछौं।

| क्र.सं. | लिङ्गनाम | स्थान | पर्वत | तीर्थ |
|---|---|---|---|---|
| १ | कुशेश्वरशिवलिङ्ग (आदिलिङ्ग) | सिन्धुली, दुम्जा | चित्रकूट | दुर्गातीर्थ |
| २ | भीमेश्वर | दोलखा, चरीकोट | ताम्रचूड | देवतीर्थ |
| ३ | काफीश्वर | सिन्धुपाल्चोक, भोटेकोशी र सुनकोशीको दोभान | ककुदाद्रि | स्वर्णतीर्थ |
| ४ | कश्यपेश्वर | काभ्रेपलाञ्चोक, महादेववेसी | ककुदाद्रि | काश्यपतीर्थ |
| ५ | स्फटिकेश्वर | सिन्धुपाल्चोक, इन्द्रावतीको समीपमा | काकन्दपर्वत | कान्तितीर्थ |
| ६ | चण्डेश्वर | काभ्रेपलाञ्चोक, बनेपा | स्कन्दगिरि | उग्रतीर्थ |
| ७ | धनेश्वर | काभ्रेपलाञ्चोक, बनेपा | रौद्रागिरि | उग्रतीर्थ |
| ८ | विकटेश्वर | काभ्रेपलाञ्चोक, साँगा | द्रोणाचल | पुष्पतीर्थ |
| ९ | इन्द्रेश्वर | काभ्रेपलाञ्चोक, पनौती | कुञ्जपर्वत | शचीतीर्थ |
| १० | भालेश्वर | काभ्रेपलाञ्चोक, विहावरको पुच्छार | निकुञ्ज | गन्धर्वतीर्थ |
| ११ | गुप्तेश्वर | ललितपुर, भारदेऊ | कुञ्जाद्रि | सिद्धतीर्थ |
| १२ | तिलेश्वर | ललितपुर, लेले | मुकुन्दगिरि | मनःश्रीतीर्थ |
| १३ | चम्पकेश्वर | ललितपुर, लेले | कासुन्द | सरस्वतीतीर्थ |
| १४ | रामेश्वर | ललितपुर, टीकाभैरव | त्रिकूटचल | प्रभातीर्थ |
| १५ | कालेश्वर | ललितपुर, गोटीखेल | सुन्दपर्वत | कालतीर्थ |
| १६ | नटरम्भेश्वर | मकवानपुर, दुर्गम क्षेत्र | त्रिकूटचल | ब्रह्मतीर्थ |
| १७ | उद्दालकेश्वर | काठमाडौँ, छेमले | व्याघ्राचल | धर्मगङ्गातीर्थ |
| १८ | गोपालेश्वर | काठमाडौँ, दक्षिणकाली | मर्कटचल | गोपालतीर्थ |
| १९ | चम्पकेश्वर | चित्लाङ, विशंखेल | वज्रपर्वत | ब्रह्मतीर्थ |
| २० | उन्मत्तेश्वर | मकवानपुर, टिष्टुङ्ग, वज्रवाराही | मयूरपर्वत | स्वर्णतीर्थ |
| २१ | नन्दिकेश्वर | मकवानपुर, टिष्टुङ्ग, वज्रवाराही | नन्दपर्वत | नन्दितीर्थ |
| २२ | गोखुरेश्वर | मकवानपुर, कृछाल कार्कीछाप | कसेरुपर्वत | गोतीर्थ |
| २३ | पाण्डुकेश्वर | मकवानपुर, पालुङ | ऋक्षवान् | भद्रतीर्थ |
| २४ | कूटेश्वर | मकवानपुर, आग्रा गाविस महादेव खर्क | चित्रकूट | गालवतीर्थ |
| २५ | असितेश्वर | धादिङ, महादेव वेसी | समुद्रपर्वत | असिततीर्थ |
| २६ | भैरवेश्वर | नुवाकोट, देवीघाट | नीलकूटपर्वत | भैरवतीर्थ |
| २७ | ब्रह्मेश्वर | नुवाकोट, कविलास | शृङ्गाचल | ब्रह्मतीर्थ |
| २८ | स्कन्देश्वर | नुवाकोट, कविलास डाँडाबारी | चन्द्रकान्त्युपलाचल पर्वत | स्कन्दतीर्थ |
| २९ | शतरुद्रेश्वर | काठमाडौँ, शिवपुरी | मृगेन्द्रपर्वत | नृसिंहतीर्थ |
| ३० | काकेश्वर | काठमाडौँ, गागलफेदी गाविस | सरकङ्कटपर्वत | आकाशगङ्गातीर्थ |
| ३१ | मणिचूडेश्वर | काठमाडौँ, शिवपुरी | मणिचूडपर्वत | मणिह्रदतीर्थ |
| ३२ | योगेश्वर | काठमाडौँ, साँखु | मणिचूडपर्वत | गङ्गातीर्थ |
| ३३ | नारायणेश्वर | काठमाडौँ, लप्सीफेदी | गन्धमादनपर्वत | कर्णह्रदतीर्थ |
| ३४ | ज्योतिर्लिङ्गेश्वर | काठमाडौँ, साँखु | कामधेनुपर्वत | योगतीर्थ |
| ३५ | रत्नचूडेश्वर | काठमाडौँ, शिवपुरीको छेउँ | दोलागिरि | रत्नह्रदतीर्थ |

| | | | | |
|---|---|---|---|---|
| ३६ | वागीश्वर | भक्तपुर, वागेश्वर गाविस | दोलागिरि | वीरगङ्गातीर्थ |
| ३७ | कीलेश्वर | काठमाडौं, चाँगु | दोलागिरि | शंखह्रदतीर्थ |
| ३८ | वाल्मीकीश्वर | भक्तपुर, वागेश्वर | सुमोदपर्वत | वीरभद्रतीर्थ |
| ३९ | मङ्गलेश्वर | भक्तपुर, मंगलबजार | सुमोदपर्वत | मङ्गलतीर्थ |
| ४० | विमलेश्वर (डोलेश्वर) | भक्तपुर, सिपाडोल | निकुण्डापर्वत | विमलोदकतीर्थ |
| ४१ | अनन्तेश्वर | भक्तपुर, दधिकोट | ऋष्याश्रमपर्वत | ऋषितीर्थ |
| ४२ | विश्वरूपेश्वर | भक्तपुर, दधिकोट तर्खगाल | ऋष्याश्रमपर्वत | वृद्धगङ्गातीर्थ |
| ४३ | सोमेश्वर | भक्तपुर, सिरुटार गाविस | धर्मरूपशैल | सोमतीर्थ |
| ४४ | गोभराटेश्वर | ललितपुर, लुभु | चक्रनेमि | गोशृङ्गी र चक्रवतीको सङ्गम |
| ४५ | भृङ्गीश्वर | ललितपुर, सुनाकोठी | नागकूटपर्वत | ज्ञानवापीतीर्थ |
| ४६ | त्रिलिङ्गेश्वर | ललितपुर, पाटन | ललितारण्य | मुनिकुण्डतीर्थ |
| ४७ | कुपितेश्वर | ललितपुर, पाटन | ललितारण्य | उदकुण्डतीर्थ |
| ४८ | सर्वेश्वर | ललितपुर, पाटन | ललितारण्य | नागह्रदतीर्थ |
| ४९ | गोलेकेश्वर | काठमाडौं, नैकापको बल्खु | नन्दभद्रशैल | रुद्रतीर्थ |
| ५० | चन्दनभराटेश्वर | काठमाडौं, चन्द्रागिरि गाविस, मातातीर्थ नजिकै | चन्दनगिरि | मातातीर्थ/ भस्मतीर्थ |
| ५१ | यक्षेश्वर | काठमाडौं, सीतापाइला | उशीरवीरपर्वत | यक्षकुण्डतीर्थ |
| ५२ | चण्डिकेश्वर | काठमाडौं, चण्डेश्वरी गाविस | मृगेन्द्रपर्वत | पिण्डारकतीर्थ |
| ५३ | धर्मेश्वर | काठमाडौं, चण्डेश्वरी गाविस, टोखा | मृगेन्द्रपर्वत | धर्मतीर्थ |
| ५४ | गोकर्णेश्वर | काठमाडौं, गोकर्ण गाविस | मुञ्जवत्पर्वत | पितामहतीर्थ |
| ५५ | कोटीश्वर | काठमाडौं, कोटेश्वर | मन्दरपर्वत | शङ्खमूलतीर्थ |
| ५६ | बाणेश्वर | काठमाडौं, बानेश्वर | पारियात्रपर्वत | बाणगङ्गातीर्थ |
| ५७ | ज्ञानेश्वर | काठमाडौं, ज्ञानेश्वर | उमाशैलपर्वत | ज्ञानधारातीर्थ (मयूरतीर्थ) |
| ५८ | पर्वतेश्वर | काठमाडौं, पाशुपतक्षेत्र, कैलास | कैलासपर्वत | ज्ञानकूपतीर्थ |
| ५९ | जलेश्वर | काठमाडौं, गुह्येश्वरी | उमाशैल | जलेश्वरतीर्थ |
| ६० | गुह्येश्वर (सिद्धेश्वर) | काठमाडौं, मृगस्थली | सिद्धाचलपर्वत | गुह्येश्वरीतीर्थ |
| ६१ | किरातेश्वर | काठमाडौं, मृगस्थली | श्लेष्मान्तकपर्वत | रुद्रसङ्गमतीर्थ |
| ६२ | भस्मेश्वर | काठमाडौं, देवपाटन | भस्माचलपर्वत | भस्मगङ्गातीर्थ |
| ६३ | भुवनेश्वर | काठमाडौं, देवपाटन | वृषभाचल | ज्ञानकुण्डतीर्थ |
| ६४ | रुद्रागारेश्वर | काठमाडौं, देवपाटन | रुद्राचल | रुद्रस्नानोदकतीर्थ |

(हिमवत्खण्ड, प्रकरण- ५, अध्याय- ९०-१५९)

प्रबल पापका कारण कुष्ठरोग भई पृथिवीमा भौंतारिएका विरूपाक्षले नेमुनिको सङ्गतबाट उनैका साथ लागेर उक्त सबै तीर्थहरूमा गई स्नान गरे। शिवलिङ्गको पूजा गरी नेमुनिका मुखारबिन्दबाट ती लिङ्गगहरूको आराधना गर्ने भक्तहरूको कथा श्रवण गरे। अन्तमा उनले भगवान् शिवको कृपाबाट सबै पाप र रोगबाट मुक्त भई मुक्तिलाभ गरे भन्ने कुरा हिमवत्खण्डमा विशेष महत्त्वका साथ वर्णन गरिएको छ।

### ४.२२ गोरक्षनाथ, मत्स्येन्द्रनाथ र मृगस्थलीको महिमा

नेमुनिका साथ तीर्थाटन गरिरहेका विरूपाक्षले शक्ति र शिवको लीलाभूमि मृगस्थलीको दर्शन गरे। त्यसपछि उनले नेमुनिको निर्देशनअनुसार मृगस्थलीपर्वतमा रहेका पशुकन्दरा, ध्रुवस्थली, स्कन्दतीर्थ, स्तनकुण्ड, शूलगङ्गा, भृगुकन्दर, अगस्त्यवापी, सप्तर्षितीर्थ, पशुयोनितीर्थ, गोखुरतीर्थ, योगकुण्ड, देववापी, स्वर्णरसा नदी, कोषोदकतीर्थ, गौरीतीर्थ, सुन्दरिकातीर्थ, ब्रह्मभेदतीर्थ, ब्रह्मदीपतीर्थ र किरातेश्वरतीर्थमा गई दर्शन, स्पर्श र स्नान गरे।

मृगस्थली नेपालको परम पवित्र तीर्थ हो। यहाँ कुनै समयमा शिवस्वरूप सिद्धयोगी गुरु गोरखनाथले मत्स्येन्द्रनाथ र आफ्ना चौरङ्गीहरूका साथ बसी योग गर्नुभएको थियो। यसै मृगस्थलीमा भगवान् पशुपतिनाथको अनुग्रहबाट उहाँहरूको योग सिद्ध भयो। अनेकौं साधकहरूले यहाँ आई गोरखनाथको कृपाले ठूलो योगसिद्धि पाएका थिए। यस मृगस्थलीमा मनले सम्झेर जुन साधकले तीन रात बिताउँछ त्यसको योग सिद्ध हुन्छ। यस्तै विशेषताका कारण मृगस्थली ज्यादै पवित्र धाम हो, सिद्धहरूको जमघट हुने क्षेत्र हो र भगवान् पशुपतिको नित्य विहारस्थल पनि हो। मार्गकृष्ण चतुर्दशीमा वाग्वतीमा नुहाएर मृगस्थली पर्वतमा आरोहण गरी शतबीज छर्नुपर्छ। त्यसो गर्दा एक दाना धान एकरति सुन बराबर बन्छ र निश्चय नै एक एक पाइलामा अश्वमेधयज्ञको फल पाउँछ भन्ने स्वयं पशुपतिनाथले उपदेश गर्नुभएको छ।

(हिमवतखण्ड, प्रकरण- ५, अध्याय- १५४ )

### ४.२३ किरातरूपधारी शिवसँग अर्जुनको युद्ध

युधिष्ठिरको सल्लाह अनुसार पाण्डवहरू वनमा गएपछि धनुर्धारी भएर गुप्तरूपमा रहेका अर्जुन तीर्थयात्रा गर्दै नेपालको मृगस्थलीमा आएका थिए। यहाँ आएर सिद्धक्षेत्रबाट उत्पन्न भएको यस वाग्वतीको सङ्गमस्थलमा उनले स्नान गरे र पशुपतिनाथको पूजा गरे। त्यसपछि जति लिङ्ग थिए, ती सबैको पूजा गरेर उनी किरातेश्वर मन्दिरको नजिकमा आए। युधिष्ठिरको मुखबाट उनले किरातेश्वरको माहात्म्य सुनेका थिए। त्यसैले उनले यस लिङ्गको विशेष पूजा गरे। उनले यहाँ एउटै ढुङ्गामा राखेर परस्पर प्रसन्न हुँदै फल खाइरहेका धनुर्धारी किरातहरूलाई चारैतिर देखे। किरातहरूले दया गरेर अर्जुनलाई बोलाएर भने – हे साथी ! यहाँ आऊ र फल खाऊ। तिनीहरूको कुरा सुन्नासाथ अर्जुन रीसले आगो भए। भित्रभित्रै रीस लुकाएर अर्जुनले उनीहरूसित भने- हे मूर्ख हो ! तिमीहरूको खानेकुरा खान म यहाँ आएको होइन, म त किरातेश्वर महादेवको लिङ्गको पूजा गर्नका लागि आएको हुँ। वनमा बस्ने मानिसहरूको क्रियाकलाप विचित्रको हुँदो रहेछ। बोली पनि यस्तो छ। बाँदरजस्ता यिनीहरू को मान्छे कस्तो भन्ने कुरा जान्दै जान्दैनन्।

अर्जुनको वचन सुनिसकेपछि ती किरातीहरू अत्यन्त रिसाए, आपसमा कुराकानी गरे र उनीहरूले भने- हे क्षुद्र ! लुगा लगाएको हुनाले शूरो छु भन्ने ठानिस् कि कसो ! हे मूर्ख ! रुखको बोक्राको लुगा लगाएर आफूलाई ठूलो ठान्ने तैंले हाम्रो अवज्ञा गरिस्। हे क्षुद्र ! धनुर्धारी तँलाई हामीले पटक्कै गनेका छैनौं। तँलाई पिट्यौं भने त्यसबेला एक्लो तँलाई रक्षा गर्ने को हुन्छ, भन्। यदि बाँच्ने इच्छा छ भने हाम्रा गोडामा ढोग्, होइन भने तेरो रगत खान खोज्ने हाम्रा बाणहरूलाई तैंले सहनुपर्छ। त्यसपछि घिउ र दाउरामा दन्किएको अग्निजस्तै क्रुद्ध भएका वीर अर्जुनले किरातहरूलाई प्रत्युत्तर दिँदै भने- वीरहरूले कहिल्यै पनि फूर्ति देखाउँदैनन्, पराक्रम देखाउँछन्। हे किङ्कर हो ! तिमीहरू अब मलाई आफ्नो पराक्रम देखाओ। त्यो कुरा सुनेर किरातहरू रीसले अत्यन्त मूर्च्छित भए। तुरुन्त उठेर त्यसबखत उनीहरूले बाणले अर्जुनलाई हाने। मुख, गोडा, पिठ्यूँ, छाती र हात ताकेर चारै दिशाबाट घेरी किरातहरूले अर्जुनमाथि प्रहार गरे। ईर्ष्यालु अर्जुनले पनि तिनीहरूको बाणबाट भएको पीडा र घाउलाई सहन गरेर अत्यन्त रिसाउँदै धनुषको ताँदोलाई मुसारे। तुरुन्त अर्जुनले किरातहरूलाई चारैतिर फर्किएर तीन-तीन बाणका दरले छुट्टाछुट्टै हिर्काए। त्यसपछि उनीहरूले बाण छोडिदिए। रिसाएर ढुङ्गा, मूढा र रुखहरूले चारैतिरबाट अर्जुनलाई खूबसित हिर्काए। हिर्काइको पीडा असह्य भएर अर्जुनले भगवान् विष्णुलाई नमस्कार गरेर तुरुन्त गाण्डीव धनुको सम्झना गरे।

गाण्डीव धनु आएपछि अर्जुनले भगवान्को मन्त्र जप्दै तिनीहरूलाई नाश गर्नका लागि तुरुन्त ग्रहण गरे। त्यसपछि कानसम्म बाणहरूलाई तानेर अर्जुनले धनुष्टङ्कार गरे र किरातहरूलाई हिर्काए। वज्रले हानिएका रुखजस्तै भएर बाणको आघातले घाइते भएका किरातहरू त्यो आघात सहन नसकेर भूमिमा पछारिए। त्यसपछि किरातहरू युद्ध छोडेर हे शम्भो ! हामीलाई रक्षा गर्नुहोस् भन्दै किरातरूपधारी शिवका शरणमा गए। अर्जुनले शिवजीको सेवा गर्न लागेका किरातहरूलाई तिनीहरूको स्वरूप नबुझीकन खूबसित ताँदो तानेर तुरुन्त बाण प्रहार गरे। यता शिवजीले पनि पिनाक धनुषको सम्झना

गर्नुभयो। पिनाक आएपछि त्यसलाई समातेर टङ्कार गर्दै त्यसलाई ताँदोमा चढाउनुभयो। भगवान् शङ्करले प्रलयकालमा पानीका धारा बर्सिए जस्तै गरी अर्जुनमाथि बाणहरूको वर्षा गर्नुभयो।

घायल भए तापनि पराक्रमी वीर अर्जुनले रुद्रमाथि बाणहरू वर्षा गरी नै रहे। उनीहरू क्रुद्ध भएर जित्ने इच्छाले मत्त भएका दुई हात्ती अथवा दुई सिंहजस्तै गरी परस्पर प्रहार गर्न थाले। शिवजीको बाणको आघातबाट भएको पीडालाई अर्जुनले सहन सकेनन्। त्यसपछि उनले युद्ध छोडेर तुरुन्त शिवलिङ्गको पूजा गरे। वनमा फूलेका फूल, पानी र चन्दन ल्याई भक्तिपूर्वक परिक्रमा र स्तुति गरेर उनले शिवजीको पूजा गरे। त्यसपछि किरातेश्वरसँग लड्न थाले। उनीहरूले बारम्बार डरलाग्दो ठूलो युद्ध गरे।

शिवजीको बाणबाट भएका घाउलाई सहन नसकेर अर्जुनले शिवजीलाई भने– म तिम्रा सेनादेखि डराएको त होइन, युद्ध गर्दा गर्दा मलाई ज्यादै थकाइ लाग्यो। हे किरात ! ध्यान दिएर एकछिन मेरो कुरा सुन, किनभने महात्माहरूको हित उपदेश सुन्नुपर्छ भनेर वेदले भनेको छ। हे किरात ! थकाइ मारी मारी शत्रुसित लड्नुपर्छ भनेर मेरा दाजु युधिष्ठिरले मलाई बताउनुभएको थियो। आज मेरो शिवपूजाको समय बित्यो। जबसम्म युद्धको समय हुँदैन त्यस समयसम्म म शिवजीको पूजा गर्छु। अर्जुनको भनाइ सुनेपछि किरातरूपधारी भगवान् शङ्कर आफूमाथि उनको भक्ति र पराक्रम देखेर खुसी हुँदै मुसुक्क हाँस्नुभयो। अनि भगवान् शम्भुले दाँतका सुन्दर किरणद्वारा दशै दिशालाई उज्यालो पार्दै अर्जुनलाई वर दिनका लागि भन्नुभयो– पूजा गर्दा मलाई बाण हान्छ कि भन्ने डर नराखीकन आफूखुसी पूजासामग्री लिएर हे अर्जुन ! आनन्दसित लिङ्गस्वरूप भगवान्को पूजा गर। भगवान्बाट इच्छा लागेको वर प्राप्त गरेपछि हे पार्थ ! मसित लडौला अर्थात् अहिले लड्नुपर्दैन।

किरातको त्यो भनाइ सुनेर अर्जुनले बाण छोडिदिए। पानी, फूल आदि पूजासामग्री लिएर उनले किरातेश्वर लिङ्गको पूजा गरे। यसरी लिङ्गको स्तुति र प्रणाम गरेर बारम्बार फ्याँकिएको त्यो धनुष र बाणलाई फेरि समाते, किरातसँग उनले युद्ध गरे। अर्जुनले लिङ्गमा जुन जुन फूल, चन्दन आदि चढाएका थिए, आफूले प्रहार गर्न लागेका किरातलाई तिनै तिनै फूल र चन्दनले युक्त पाए। अर्जुनले चढाएको चन्दन दलेर फूलले सिङ्गारिएर उनैले चढाएका जलमा निथ्रुक्क भिजेर मुसुमुसु हाँस्दै प्रहार गरिरहेका शिवजीलाई अर्जुनले देखे। त्यसपछि कसो हो ए ! भनेर उनले बुझ्न खोजे। आफूले चढाएको फूल र चन्दनलाई चिनेर लडाइँमा बाण हान्न तयार हुँदाहुँदै पनि उनले यी किरात शिव नै हुन् भन्ने निश्चय गरेर बाणप्रहार गरेनन्।

अर्जुनको पराक्रम देखेर प्रसन्न हुनुभएका भगवान् शङ्करले पनि पिनाकधारी आफ्नो दिव्यस्वरूप अर्जुनलाई देखाइदिनुभयो र माया हटाइदिनुभयो। अर्जुनले पिनाकधारी भगवान् शङ्करलाई देखेर बाण परित्याग गरे। पृथ्वीमा लम्पसार परेर दण्डवत् प्रणाम गरे। बारम्बार शिवजीको स्तुति गर्दै भने– संसारका संहारकर्ता रुद्रलाई नमस्कार छ। सम्पूर्ण प्राणीका स्वामीलाई नमस्कार छ। तीन आँखा भएका प्रेतका स्वामी शङ्करलाई नमस्कार छ। किरातको शरीर धारण गर्ने अजन्मा र किरातको भेषधारीलाई नमस्कार छ। किरातका स्वामी तेजस्वरूप किरातलाई नमस्कार छ। भक्तहरूका निमित्त कल्याणकारक, व्यक्त तथा अव्यक्त स्वरूप भएका भगवान्लाई नमस्कार छ। सम्पूर्ण जगत्को रक्षा गर्ने पिनाकधनुर्धारी महेश्वरलाई नमस्कार छ। उत्तम वर दिने वरका अधिपति परम परमेश्वर परात्परलाई नमस्कार छ।

हे भगवन् ! मायाले मैले मोहित भएर हजुरसँग युद्ध गरेँ। हजुरमाथि खूबसित बाणहरू प्रहार गरेँ। हे ईश्वर ! मेरो अपराधलाई क्षमा गरिदिनुहोस्। किरातरूपधारी भगवान् शङ्करले भन्नुभयो– अघिल्लो जन्ममा तिमी पनि किरात भएका थियौ। यसै वाग्वतीमा स्नान गरेको हुनाले यस जन्ममा अर्जुन भएका हौ, यसमा शङ्का छैन। हे अर्जुन ! तिम्रो पराक्रम देखेर विशेष गरी स्तुति, भक्ति र चालचलनबाट म प्रसन्न भएँ। हे पाण्डुपुत्र ! अब तिमी मसित वर माग। तिम्रो मनमा जे लागेको छ, त्यो सबै म दिन्छु।

अर्जुनले भने– हे सर्वज्ञ ! हे सबैका वन्दनीय ! हजुर कृत्य र अकृत्य सबै कुरा थाहा पाउनुहुन्छ। मेरो हृदयमा के कस्तो वेदना छ त्यो हजुर जान्नुहुन्छ। दुर्योधनले हाम्रो राज्य सबै लुट्यो। उसले गरेको अपमानले गर्दा हामी वनवास हिँड्यौ। हे महादेव ! म क्षत्रिय हुँ। कौरवलाई युद्धमा जितेर आफ्नो राज्य लिन चाहन्छु। हे शङ्कर ! यही वर दिनुहोस्। यो भनाइ सुनेर भगवान् शिवले भन्नुभयो– हे अर्जुन ! केही समयपछि तिमीले सोचेजस्तै हुनेछ। मेरो अनुग्रहले गर्दा तिम्रो हृदयमा जे छ त्यो कामना पूर्ण हुनेछ। हे अर्जुन ! तिमीले यस क्षत्रियतीर्थमा स्नान गर, भारतवर्षमा विजय पाउनेछौ। त्यसपछि तिमी मेरो धाममा जानेछौ।

अर्जुनलाई यति कुरा भनेर भगवान् शङ्कर सम्पूर्ण दिशालाई कान्तिद्वारा उज्यालो पार्दै सूर्य अस्ताचलमा डुबेझैँ गरी त्यसै लिङ्गमा विलीन हुनुभयो। अर्जुनले पनि भगवान् शङ्करलाई नमस्कार गरे, किरातेश्वर लिङ्गको परिक्रमा गरे। श्रद्धा र

भक्तिका साथ क्षत्रियतीर्थमा गएर उनले स्नान गरे। यसरी वर पाएका अर्जुन कार्तिकपूर्णिमाको दिन स्नान गरेर दसै दिनभित्र जहाँ दाजुभाइ बसेका थिए त्यस ठाउँमा पुगे। (हिमवत्खण्ड, प्रकरण- ५, अध्याय- १५६)

### ४.२४ पशुपतिनाथको विलक्षण लीला

एक दिन पार्वतीले भगवान् पशुपतिनाथलाई नमस्कार गर्दै भन्नुभएको थियो- हे भगवन् ! सृष्टि गरेका सबै प्राणीहरू आफ्नै कर्मबाट मुक्त भई कहाँ लीन हुन्छन् ? हजुरको अंशबाट उत्पन्न भएका जुन देवता, ब्रह्मा र दश दिक्पाल छन्, तिनीहरू कर्मपाशबाट मुक्त भएर प्रलयकालमा कहाँ लीन हुन्छन् ? ब्रह्मा, विष्णु, गणेश, दुर्गा, सोम, जल, अनिल, पृथ्वी, अग्नि यी सबै मूर्ति मेरा हुन् भनेर हजुरले मलाई कुनै दिन भन्नुभएको थियो। ती देवताहरू कहाँ विलीन हुन्छन् ? यो कुरा म सुन्न चाहन्छु।

पार्वतीको यस्तो वचन सुनेर लोकका कल्याणकारी भगवान् शङ्कर उमासँग अत्यन्त खुसी हुनुभयो। पार्वतीप्रति प्रसन्न हुँदै पशुपतिनाथले भन्नुभयो- हे पार्वती ! यी माथि बताइएका मूर्तिहरू सबै मेरा हुन्। तिमीले जे कुरा भन्यौ त्यो कुरा सबै ठीक छ। हे भवानी ! यी ब्रह्मा आदि देवताहरू तिम्रा र मेरा अंश हुन्। ब्रह्मा भनेको म नै हुँ, विष्णु म नै हुँ, गणेश म नै हुँ, वायु म हुँ। चन्द्रमा, सूर्य, अग्नि, दुर्गा, पृथ्वी र जल भनेको म हुँ, अर्को कुरा छैन। आकाश भनेको म हुँ, म यजमान हुँ, यज्ञरूप पनि म हुँ, म ईश्वर हुँ, म मन्त्र हुँ, म भोक्ता हुँ, हवनीय पनि म हुँ र भोज्य पनि म नै हुँ। मन भनेको म हुँ, म बुद्धि पनि हुँ, म चित्त हुँ, जीवमा रहेको घमण्ड भनेको म हुँ, म आनन्द हुँ। त्यही आनन्द रूप लिएर जगत्लाई मैले व्याप्त गरेको छु। मबाट नै सम्पूर्ण जगत्को सृष्टि भएको छ। ममाथि नै सम्पूर्ण संसार अडिएको छ। ममा नै सबै विलय हुन्छ। त्यसैले म ब्रह्मा हुँ र म अव्यय हुँ। हे देवी ! अब सबै देवताहरू अघि जुन जुन ठाउँबाट पैदा भएका थिए, मेरो शरीरका तिनै तिनै ठाउँमा विलीन हुँदैछन्, हेर।

यति भनेर भगवान् शङ्कर चुप लाग्नुभयो। महालिङ्गस्वरूप भगवान् शङ्कर स्थावरजस्तै भएर रहनुभयो। फेरि दश देवताहरू पनि आफूमा विलीन भएको दृश्य पार्वतीलाई देखाउनुभयो। त्यो ज्योतिर्मय महालिङ्ग अन्त्यमा जस्ताको तस्तै रह्यो। पशुपतिनाथले बत्तीको ज्वालाले तेजलाई सोसेजस्तै गरी आफ्ना अवयव भएका सबै देवताहरूलाई शोषण गरेर बिस्तारै आफैंमा विलीन गराउनुभयो। पाँच मुखमध्ये सबैभन्दा माथि रहेको ईशानमुखमा सूर्यलाई विलीन गराउनुभयो। आफ्ना किरणद्वारा संसारलाई प्रकाशित तुल्याउने चन्द्रमा पनि तारागणहरूका साथ ठूलो ज्योतिर्लिङ्गमा विलीन भए। त्यसपछि ब्रह्मा पनि ज्योतिर्लिङ्गको तत्पुरुष नाम गरेको पूर्वपट्टिको मुखमा आफ्नो शक्तिसहित देवताको अगाडि नै विलीन हुनुभयो। विष्णु पशुपतिको दक्षिणतिर रहेको अघोर नाम गरेको मुखमा प्रवेश गर्नुभयो। यसै मुखमा ज्वालामय अग्नि पनि विलीन भए। श्री गणेश पश्चिमतर्फ रहेको भगवान् शङ्करको सद्योजात नामक मुखमा प्रवेश गर्नुभयो। प्रलयको अग्निमा संसार विलीन भएजस्तै गरी वायु पनि त्यसै मुखमा त्यसैबेला विलीन भए। पशुपतिस्वरूप महालिङ्गमा प्रवेश गर्न लागेका देवतालाई देखेर आफू पनि त्यस शिवलिङ्गको तेजले आकृष्ट भएकी पार्वती अचम्ममा पर्नुभयो।

उत्तरपट्टि रहेको वामदेव नाम गरेको शिवजीको मुखमा ज्वालामा बत्ती लीन भएझैं गरी लिङ्गको तेजबाट आकृष्ट भई पार्वती पनि विलीन हुनुभयो। आगाको ज्वालामा सलह लीन भएजस्तै ज्योतिर्मय लिङ्गमा प्राणीहरू, देवता र राक्षसहरू सबैतिरबाट लीन भए। त्यसबखत रात्रिको बीचमा दियो बलेजस्तै गरी पानीको बीचमा केवल ज्योतिर्लिङ्गस्वरूप भगवान् पशुपति मात्र सुशोभित हुनुभयो। सम्पूर्ण प्राणीहरूलाई संहार गरेर दिव्य तीस हजार वर्षसम्म भगवान् शङ्कर एक्लै बस्नुभयो।

त्यसपछि भगवान् पशुपतिले आफैं प्राणीहरूको सृष्टि गर्नुभयो। सबैभन्दा पहिले पार्वतीको सृष्टि गर्नुभयो। त्यसपछि अरूको सिर्जना गर्नुभयो। कार्तिक शुक्ल नवमी आइतबारका दिन सम्पूर्ण दिशालाई उज्यालो तुल्याउँदै त्यसै लिङ्गबाट सूर्य पैदा हुनुभयो। त्यसैगरी तारासहित चन्द्रमा पनि पूर्णिमाको दिन दशै दिशा उज्यालो पार्दै समुद्रमा उदाएझैं गरी शिवजीबाट बाहिर निस्किए।

फेरि सम्पूर्ण लोकको सृष्टि गर्ने इच्छाले पाँच मुख भएका ब्रह्मा वेद पढ्दै शिवजीको पूर्वपट्टिको मुखबाट प्रकट हुनुभयो। अत्यन्त कान्ति भएका भगवान् विष्णु शिवजीको अघोर वक्त्रबाट प्रकट हुनुभयो। त्यस्तै आफ्ना ज्वालाले सम्पूर्ण दिशालाई उज्यालो तुल्याउँदै अग्नि पनि निस्कनुभयो। भगवान् शङ्करको सद्योजात नाम गरेको मुखबाट गणेश निस्कनुभयो। महावीर वायु पनि फेरि निस्किएर वहन थाले। पार्वतीले लिङ्गबाट निस्किरहेका सबै देवतालाई देख्नुभयो। त्यसपछि ईश्वर नै सत्य हुनुहुँदो रहेछ, अजन्मा हुनुहुँदो रहेछ भन्ने तथ्य निर्णय गरी पार्वती अत्यन्त प्रसन्न हुनुभयो। परब्रह्म परमात्माका कारणले गर्दा यो चर तथा अचर जगत् पहिले जस्तो थियो, त्यस्तै बन्यो। कालान्तरमा फेरि यसै लिङ्गमा सिद्ध, देवता, ऋषि

तथा प्राणीहरू आफ्नो घरमा मानिसहरू रातको समयमा मस्त निद्रामा परी लीन भएझैँ विलीन हुनेछन्। भगवान् शङ्कर सबै प्राणीहरूका आलय हुनुहुन्छ। त्यसैले उहाँलाई संसारको आलय मानिन्छ। सम्पूर्ण प्राणीहरू उहाँमा लीन हुन्छन्, त्यसैले उहाँलाई लिङ्ग भनिन्छ। (हिमवतखण्ड, प्रकरण- ५, अध्याय- १६१)

## ४.२५ लिच्छवि राजा धर्मदत्तको किरात राजामाथि विजय, नेपालमा शासन र छोराहरूलाई उपदेश

पशुपतिको पूर्वोत्तरमा किरातराज्य थियो। त्यसका शासक शङ्कु थिए। उनी विशालनगरीका पनि शासक बनेका थिए। भारतको काशीबाट राजा धर्मदत्त आफ्ना मन्त्री बुद्धिक्षेत्रका साथ नेपालमा आए। उनले किरातहरूले भरिएको र अयली एवं तोरणले सजिएको विशाल नगरी नजर गरे। काठमाडौँको विशालनगरको शोभा देखेर ललचाएका धर्मदत्तले आफ्नो मन्त्रीको सुझावअनुसार मणिचूडपर्वतमा गई तपस्या गरे। त्यहाँ उनलाई वाग्वतीले प्रकट भएर वरदान दिँदै भन्नुभयो- तिमीले किरातराजालाई जितेर तिनको राज्य पाउनेछौ। राजा धर्मदत्तले वाग्देवीको स्तुति गरे। तपस्याबाट फर्केपछि उनले किरात राजाको दरबारमा दूत पठाए। दूतले त्यहाँ गएर किरातहरूलाई वनराज्य नै उपयुक्त हुन्छ, क्षत्रियहरूले राष्ट्र सञ्चालन गर्दा प्रजा सुखी हुन्छन्, तसर्थ तिमीले लिच्छवि राजा धर्मदत्तलाई राज्य सुम्पिदेऊ भन्ने प्रस्ताव राखे। किरातराजा रिसाए। फलस्वरूप घनघोर युद्ध भयो। धर्मदत्तको सेनाले किरातसैन्यलाई परास्त गर्दै गयो र अन्त्यमा युद्धक्षेत्रमा ठूलै आगजनी गऱ्यो। किरातराजाका धेरै सैनिकहरूको क्षति भयो। किरातराजा शङ्कु दरबार छाडेर भागी वनमा गएर लुके। पछि उनी ठूला तपस्वी भए। भगवान् विष्णुको आराधना गरे। भगवान् नारायणका सहचारी नर भई बद्रीधाममा नरनारायणका रूपमा रहे।

किरातराजामाथि विजय गर्ने धर्मदत्तले किरातराज्य ग्रहण गरी राज्याभिषेक लिएर विशालनगरका साथै पूर्वोत्तरमा रहेको किरातराज्यको पालन गरे। पाशुपती पुरीलाई त्यसबेला सत्यपुरी पनि भनिन्थ्यो। उनले पाशुपती पुरीको राज्य हस्तगत गर्न भगवती गुह्येश्वरीको आराधना गरे। गुह्येश्वरीबाट खड्ग प्राप्त गरी पाशुपती पुरीका शासक देवगणहरूसँग सङ्ग्राम गरे। धर्मदत्त गुह्येश्वरीका भक्त भएकाले देवगणले उनलाई परास्त गर्न सकेनन्। वैशालाधिपतिले विजय प्राप्त गरे। उनले पाशुपती पुरी राज्यको वागडोर हातमा लिएपछि पुरीको राम्ररी दर्शन गरे।

अनेक मणि र रत्नहरूले खचित भएको, राम्रा राम्रो आँखीझ्यालले गर्दा सुशोभित घरहरूलाई राजाले प्रसन्न भएर हेरे। राजाले कौशी, महल, सुनका घरहरू तथा आठ माङ्गलिक तोरणहरू देखे। राजाले जल निस्कने बाटो स्वच्छ धार भएका पानीका नाला, कमल फूलको तलाउ, विचित्र आँगन र सिङ्गारिएका चउर देखे। उनले अनेक रङ्ग भएका बास्ना आउने फूलहरूले झकिझकाउ भएका विचित्र किसिमका बगैँचा र सानासाना उद्यानहरूलाई देखे। राजाले अनेक रुख, लहरा र फलले सधैँ सुशोभित हुने दिव्य बगैँचा देखे। राजाले त्यसको बीचमा पुन्नाग (चिलाउने) यूथिका (जुटी) जाति (जाई), मन्दार, चम्पक (चाँप), क्रमुक (सुपारी), नरिबलको बीचमा शोभायमान भएर रहेको पारिजातलाई देखे। त्यस्तै ताड, अङ्गुर, खजुर, ल्वाङ्ग, कटहर, आँप, बेल, दाडिम, बीजपुर, सधैँ उत्पन्न भइरहने केराले सुशोभित त्यस नगरीलाई उनले देखे। मयूर, कोइली, जीवञ्जीव आदि गरिएका राम्रा पँखेटा भएका चराहरू र कानलाई आनन्द दिने भ्रमराहरूको आवाज उनले सुने। सुन्दर खालको दिव्य शहरलाई देखेर उनी हर्षले गद्गद भए।

राजाले तेजस्वी भगवान् शङ्करको मन्दिर देखे। टाढैदेखि उनले शरीर, मन र वचनले नमस्कार गरिसकेपछि भक्तिपूर्वक कल्याणदायक भगवान् शङ्करको स्तुति गर्दै भने- हे पशुका मालिक ! रुद्ररूप लिने भगवान् शङ्करलाई नमस्कार छ। पाँचवटा मुख भएका भगवान् शङ्करको म भजन गर्छु। यसरी राजाले शङ्करको स्तुति गरेपछि उनी लिङ्गको नजिकै गए। उनले ज्योतिर्लिङ्ग देखे। हर्षले आँखाभरि आँसु पारेर रोमाञ्चित भए। शिखाजस्तै गरेर विराजमान भएका पाँचमुखे भगवान् शङ्करलाई उनले नमस्कार गरे। विभिन्न किसिमका कलश, मुद्रा आदि धारण गरेका आठ हात भएका पूजनीय भगवान् शङ्करको लिङ्गलाई राजाले विधिपूर्वक सभक्ति पूजा गरे। वाग्वतीको जल र फूल चढाएर प्रणाम गर्दै उनले लिङ्गको परिक्रमा गरे।

उनले फौजहरूलाई पशुपतिको नाम जप्नू भन्ने उर्दी दिए। सेनालाई उनले पद अनुसारको सुवर्ण र बसोवासका लागि भवनहरू दिए। चारै दिशाका सम्पत्ति र दरबार उनले आफ्ना छोराहरूलाई दिए। त्यही कुरा आफ्ना प्रजाहरू र मन्त्रीहरूलाई उनले बताए- "हे बाबु हो ! यहाँ आनन्दसित बस।" त्यसपछि उनले छोरा, मन्त्री, प्रजा सबैले देवता, ब्राह्मण र गाईको प्रतिदिन पूजा गर्नू, साँचो बोल्नू, सोझो हुनू, सत्यको पालना गर्नू, यी दिशा-विदिशाको रक्षा गर्नू, तिमीहरू यो नगरका आजदेखि दिक्पाल भयौ। हे मन्त्री हो ! धर्मअनुसार तिमीहरूले प्रजाको पालन, पोषण गर्नू। जेठा बाबुलाई मान्नू, प्रजाहरू सबैले पनि जो जेठो छ, त्यसैलाई क्रमशः अधिपति बनाउनू। धर्म र सत्यको पालन गर्नू, यसो गऱ्यौ भने धर्म, अर्थ, काम, मोक्ष चारै पुरुषार्थ

उपलब्ध हुनेछन्। धर्म छोड्यौ भने धेरै बाँच्नेछैनौ। नरकमा पर्नेछौ। वाग्वतीको आर्यघाटमा स्नान गरेर पशुपतिको पूजा गर। शरीर, मन र वचनले भक्तिपूर्वक भगवान्को नाम लिँदै प्रदक्षिणा गरेर स्तुति गर।

यति भनेर राजाले आनन्दसित राज्य गरे। त्यसपछि छोरा, मन्त्री र प्रजालाई सम्झाएर राजाले वाग्वतीमा स्नान गरे, पशुपतिको पूजा गरे। त्यसपछि फेरि उनले सम्झाउँदै भने– यो शहरमा जति मानिस छन्, ती सबैले सत्य पालना गर्नुपर्छ, सोझो बोल्नुपर्छ, धर्ममा सत्य रहन्छ, धर्मले आयु लामो हुन्छ। हे मन्त्री हो ! हे छोरा हो ! यो सम्झेर प्रजाको पालना गर। त्यसपछि दिक्पाल भएर त्यस शहरमा उनका छोराहरू चिरायु भई आनन्दसित बसे। धर्मपूर्वक आफ्नो कर्तव्यलाई उनीहरूले वर्षौंसम्म पालना गरे। त्यसैले सबैलाई मोक्ष दिने यस नगरको नाम सत्यवती रह्यो। देवताहरूले त्यहाँ तपस्या गरे, त्यसैले यसलाई तपोवती भनियो। तीनै लोकमा सत्यवतीजस्तो ठूलो अर्को कुनै शहर छैन। सुवर्णले परिपूर्ण अर्थात् समृद्ध र मुक्ति दिने यस नगरीलाई चर्मचक्षुले देखेर बुझ्न सकिँदैन। (हिमवत्खण्ड, प्रकरण– ६, अध्याय– १६४ देखि १६५)

## ४.२६ भगवान् श्रीकृष्णको नेपालयात्रा

एक दिन नारदजीले नेपालमा आउनुभएका भगवान् श्रीकृष्णसँग हामी नेपालका तीर्थहरूको माहात्म्य सुन्न चाहन्छौं र यी तीर्थहरूमा स्नान गरेर सिद्धि प्राप्त गर्न चाहन्छौं भनेपछि भगवान् कृष्णले मुनि र देवताहरूलाई खुसी तुल्याउँदै आफ्ना छोरा प्रद्युम्नसहित आफू गरुडमा सवार भई ऋषिमुनि, देवता, सिद्धगण र द्वारकाबाट सँगै नेपाल आएका यादवहरूलाई समेत रथको आकारका साना साना विमानमा सवार भई नेपालमण्डलको आकाशमा सुस्तरी उडान भर्दै प्रत्येक तीर्थमाथि रहेको आकाशमा टक्क अडिएर ती ती तीर्थहरूको दर्शन गराउने र तिनीहरूको माहात्म्य सुनाउने कुरा स्वीकार गर्नुभयो।

त्यसपछि श्रीकृष्ण र प्रद्युम्न सवार हुनुभएको वाहन गरुडलाई माझमा राखी देवता, ऋषिमुनि, सिद्ध र यादव सवार भएका रथको आकारका साना साना अरू विमानले श्रीकृष्णको निवासभूमि दोलागिरिबाट आकाशमा उडान भरे। गरुडमा सवार हुनुभएका श्रीकृष्णले तल भुइँमा प्रमोदतीर्थको दर्शन गर्नुभएपछि गरुडलाई मध्यआकाशमा टक्क अडाउनुभयो। गरुड अडिएपछि अरू सम्पूर्ण विमान पनि त्यहीं रोकिए। भगवान्ले प्रमोदतीर्थमा आ–आफ्ना विमान ओरालेर स्नान गर्न सबैलाई आदेश दिनुभयो। सर्वप्रथम भगवान्ले स्नान गर्नुभएपछि सबैले स्नान गरे। केहीबेर सबै तीर्थयात्रीलाई प्रमोदतीर्थमा बसेर श्रीकृष्णले उपदेश दिँदै भन्नुभयो– यात्रीहरू ! यो प्रमोदतीर्थ नेपालका ठूला तीर्थमध्येको एउटा हो। यस्ता महातीर्थ नेपालमा तीन करोड छन्। ती सबैमा अहिले यात्रा गर्न सम्भव छैन। म केही मुख्य तीर्थमा आकाशमार्गबाट तपाईंहरूलाई लैजानेछु। एउटा कुरा तपाईंहरूले ख्याल गर्नुपर्नेछ। म जुन जुन तीर्थमा पुऱ्याउँछु त्यहाँ त्यहाँ मेरा पुत्र प्रद्युम्नलगायत तपाईंहरू सबैले श्रद्धापूर्वक गङ्गाको भावले चित्त समर्पण गरी स्नान गर्नुपर्नेछ। अब म मैले उल्लेख गरेका मुख्य तीर्थका लागि तपाईंहरूका साथ आकाशमा उडान भर्नेछु।

श्रीकृष्णले यसो भन्नुभएपछि गरुड उड्नका लागि पखेटा फैलाएर तयार भए। कृष्ण र प्रद्युम्न गरुडमा सवार हुनुभयो। अरू सबै तीर्थयात्री आ–आफ्ना तीर्थमा सवार भए। गरुडले उडान भरे। अरू विमान पछिपछि लागे। भगवान् श्रीकृष्ण माहेश्वरीतीर्थमा गएर अडिनुभयो। अरू पनि टक्क अडिए। भगवान्को निर्देशनअनुसार गरुड एवं सबै विमानले धर्तीमा ओर्लेर विश्राम गरे। श्रीकृष्णले सबैका साथ माहेश्वरीतीर्थमा स्नान गर्नुभयो। श्रीकृष्णले भन्नुभयो– हे तीर्थयात्रीहरू हो ! माहेश्वरीतीर्थ नेपालको सर्वोत्तम तीर्थ हो। यहाँ आश्विनशुक्ल नवमीमा गरिने स्नान ज्यादै महत्त्वको छ। यस तीर्थमा उक्त तिथिमा नुहाउने मानिसले फेरि जन्म लिनुपर्दैन। यसरी उपदेश दिएर माहेश्वरीतीर्थमा नै बसी भगवान् कृष्णले सबैलाई भैरवतीर्थको नजर गराई त्यसको महत्त्व पनि बताउनुभयो।

त्यसपछि भगवान् कृष्णले आफ्ना तीर्थयात्रीहरूलाई नेपालमण्डलमा रहेका ब्रह्मपदी, सिप्रा, हिमस्रवा, रेविका र पम्पातीर्थमा दर्शनस्पर्शन गराउन गरुडमा सवार भई उनीहरूलाई पनि आ–आफ्ना विमान सवार हुन आदेश गरी गगनमण्डलमा उड्नुभयो। प्रत्येक तीर्थमाथि आकाशमा उड्दै भगवान् कृष्णले ती ती तीर्थहरूको परिचय र महिमा बताउँदै भन्नुभयो– ब्रह्मपदीतीर्थमा श्रावणपूर्णिमामा, सिप्रातीर्थमा चैत्रको मङ्गलबारका दिन, हिमस्रवातीर्थका दिन चैत्राष्टमीका दिन, रेविकातीर्थमा वैशाख कृष्ण द्वितीयाका दिन र पम्पातीर्थमा ज्येष्ठ शुक्लतृतीयाका दिन स्नान, ध्यान र पूजा गर्दा विशेष फल प्राप्त हुन्छ।

यसरी उपदेश दिएपछि भगवान् श्रीकृष्णले गरुडलाई उत्तरतर्फ मोड्नुभयो। अरू यात्री पनि भगवान्का पछि लागेर आ–आफ्ना विमानका साथ नेपालमण्डलको उत्तर हिमालयतर्फ लागे। गरुडवाहन भगवान्ले मध्य आकाशबाट नीलो जलले भरिएको गोसाईंकुण्डमा रहेको महाकुण्ड नजर गर्नुभयो र सबैलाई कुण्डमा उत्रेर स्नान गरौं भनी ओराल्नुभयो। रथबाट

ओर्लिएपछि गोसाइँकुण्ड र त्यहाँका मुख्य सातवटा अरू कुण्डमा भगवान्ले नुहाउनुभयो र सहयात्रीले पनि नुहाए। भगवान्ले गोसाइँकुण्डको तटमा बसेर ती सबै कुण्डहरूको महिमा बताउँदै भन्नुभयो– गोसाइँकुण्डमा श्रावणमासको पूर्णिमाका दिन नुहाउने मानिस र चैत्र कृष्णअष्टमीका दिन सातै कुण्डमा नुहाउने मानिसहरू संसारबाट मुक्त हुन्छन् र परमपदमा प्राप्त हुन्छन्। यसरी बताएर भगवान् कृष्णले तिनीहरूका सामु गोसाइँकुण्डबाट उत्पन्न भएकी रुद्रनदी अर्थात् त्रिशूली नदीको पनि महिमा बताउनुभयो।

त्यहाँबाट उठेर सबैलाई आ–आफ्ना विमानमा सवार हुन लगाई भगवान् श्रीकृष्णले गोसाइँकुण्डबाट पूर्वतर्फ कोशी नदीका धाराहरूको दर्शन गर्न आफ्ना वाहन गरुडलाई मोड्नुभयो। पूर्वमा दुर्गातीर्थ र आदिलिङ्ग कुशेश्वरको समीपमा विमान ओराल्न लगाई अरू सबै सहयात्रीहरूलाई पनि ओराल्नुभयो। त्यहाँ सम्पूर्ण यात्रीसहित भगवान् कृष्णले दुर्गा, रत्नश्रवा, सूर्यदीप्ति नदीमा स्नान गरी सबै ती नदीहरूको महत्त्व बताउँदै भन्नुभयो– दुर्गा नदीमा महानवमी, रत्नश्रवामा आश्विन अमावास्या र सूर्यदीप्तिमा रविसप्तमी एवं मार्गसङ्क्रान्तिमा स्नान गर्दा विशेष दीप्ति र पुण्य प्राप्त हुन्छ। त्यसपछि भगवान् कृष्ण उनै यात्रीहरूका साथ मणिचूडपर्वत योगगङ्गा, वज्रयोगिनी, आदिशक्ति, रत्नसरोवर र मणिचूडपर्वतबाट निस्केका नौवटा धारामा बनेका तीर्थ भद्रतीर्थ, उग्रतीर्थ र शचीतीर्थमा छुट्टाछुट्टै गएर स्नान गर्नुभयो। त्यसबेला भगवान् श्रीकृष्णले मणिचूडपर्वतमा बसेर उक्त सबै तीर्थहरूको महिमा बताउँदै भन्नुभयो– मणिचूडपर्वत, वज्रयोगिनी, योगगङ्गा तीर्थहरूमा क्रमशः गएर स्नान, ध्यान एवं आजापूजा गर्दा पापमुक्ति हुन्छ, फेरि गर्भमा बस्नु पर्दैन, परमगति प्राप्त हुन्छ।

यसैगरी यी तीर्थहरूमा गई स्नान गर्दा हजारौँ गोदानको फल प्राप्त हुन्छ र अन्तमा भगवान् शङ्करको कैलाशमा गति हुन्छ। यसरी उपदेश दिनुभएपछि भगवान् श्रीकृष्ण आफ्ना उनै तीर्थयात्रीहरूका साथ कुशेश्वरतीर्थ र कोशीभन्दा पश्चिमतर्फ रहेका गन्धर्वतीर्थ, विश्वह्रद, चित्रसरोवर, कासुन्दपर्वत, कालतीर्थ, कालेश्वर शिवलिङ्ग, ब्रह्मतीर्थ, नृत्येश्वर शिवलिङ्ग, सरस्वतीकुण्ड, प्रभातीर्थ, व्याघ्रतीर्थ, कनखलतीर्थ, नन्दितीर्थ, पद्मतीर्थ आदि तीर्थहरूमा गई स्नान, दान, देवदेवीको दर्शन र पूजाआराधना गर्दा परमपद प्राप्त हुने कोटिकोटि गोदानको फल प्राप्त हुने, अश्वमेधयज्ञको फल प्राप्त हुने, रुद्रलोकमा जान पाइने विषयमा चर्चा गरी सबैलाई लिएर ती ती तीर्थहरूमा गई स्नान गरेर प्रसन्न हुँदै अन्तमा ती तीर्थहरूको महिमामा आधारित कथा सुनाउनुभयो।

त्यसपछि भगवान् श्रीकृष्ण उनै सहयात्रीहरूका साथ असिततीर्थ, इन्द्रसरोवर, नवलिङ्गतीर्थ, मातातीर्थ, कर्कोटकसरोवर, रुद्रतीर्थ, रुद्रावती र वाग्वतीको सङ्गममा रहेको तीर्थ, लुम्तीतीर्थ, उशीरपर्वत, गुप्तलिङ्गेश्वरतीर्थ, चण्डिकेश्वरतीर्थ, विष्णुपदीतीर्थमा आ–आफ्ना साधनद्वारा जानुभयो र स्नान, देवदर्शन र पूजाआजा गर्नुभयो। त्यसपछि उहाँले आफ्ना सहयात्रीहरूलाई वैशाख महिनाको अमावास्याको दिन मातातीर्थमा स्नान गर्ने व्यक्तिले आफ्नी आमाको उद्धार गर्दछ र मातृकुलको पनि उद्धार गर्दछ। यसैगरी आषाढ शुक्ल द्वादशीका दिन त्यहाँ स्नानमात्रै गरियो भने पनि मानिसले सम्पूर्ण पाप नाश गरी आत्माको उद्धार गर्दछ। माथि बताइएका सम्पूर्ण तीर्थहरूमा स्नान गर्दा पाप नाश हुने, हजारौँ गोदानको फल प्राप्त हुने र मृत्युपछि परमगतिमा प्राप्त हुने कुरा बताइएको छ। यी सबै तीर्थहरूका लागि विशेष तिथिहरू पनि बताइएका छन् जसको परिज्ञान मूल पुस्तकको १८५ औँ अध्यायबाट गर्न सकिनेछ।

भगवान् श्रीकृष्णले त्यसपछि आफ्ना साथीहरूलाई वाराहीतीर्थ, चन्द्रभागानदी, विमलाम्बुमहातीर्थ, कावेरीमहातीर्थ, कावेरी र मणिमतीको सङ्गममा रहेको मणितीर्थ, शङ्खदह, अनन्तदह, वीरभद्रानदीको तीरमा रहेको तीर्थ, सोमतीर्थ, शुङ्गतीर्थ, धर्मनदी, गोदावरीतीर्थ, हनुमान्घाटतीर्थ, रुद्रधारा, कोटीश्वरतीर्थमा गई स्नान, ध्यान गरौँ भनी सबैलाई आ–आफ्ना साधनबाट ती ती तीर्थहरूमा जान आदेश दिनुभयो र स्वयं भगवान् कृष्ण पनि आफ्ना पुत्रका साथ गरुडमा सवार भई माथि बताइएका तीर्थहरूमा जानुभयो। त्यहाँ गएर उहाँले ती सबै तीर्थहरूमा स्नान, दान, ध्यान एवं देवदर्शन गर्नुभयो। वास्तवमा उक्त तीर्थहरूमध्ये वाराहीतीर्थलाई सर्वोत्तम मानिएको छ। त्यहाँ जलमा जलशायी विष्णुको दर्शन गर्न पाइन्छ। उक्त सबै तीर्थहरूका लागि विशेष तिथि निर्धारण गरिएका छन्।

यसरी उपदेश दिएपछि भगवान् श्रीकृष्ण आफ्ना सहयात्रीहरूका साथ नेपालमा प्रसिद्ध तीर्थ शङ्खमूलमा जानुभयो र सबैलाई त्यहाँ स्नान, दान गर्न लगाउनुभयो। त्यसपछि शङ्खमूलतीर्थको महिमा बताउँदै भन्नुभयो– यो तीर्थ फलदाता, भुक्तिदाता र मुक्तिदाता पनि छ। यसमा स्नान गर्ने मानिस सहजरूपमा भगवान्को धाममा प्राप्त हुन्छ। गाई, ब्राह्मण, पितृ, बालक र स्त्रीजातिको हत्याबाट लागेको पाप शङ्खमूलमा स्नान गर्दा समाप्त हुन्छ। मेरो पाउबाट निस्केकी शतगङ्गा र वाग्वतीको सङ्गम हुने यो तीर्थ अत्यन्त मेरो प्यारो तीर्थ हो। यसैको नजिकमा मृगोदकतीर्थ छ। त्यहाँ स्नान गरेपछि हामीहरू सबै भगवान् पशुपतिको ज्योतिर्लिङ्ग दर्शन गर्न जानुपर्छ। यसरी बताएपछि ती सबैले शङ्खमूलतीर्थमा र अरूतीर्थमा स्नान

गरे। भगवान्‌को आदेशअनुसार भगवान्‌का साथ ती सबै पशुपतिको दर्शन गर्न पाशुपतक्षेत्रमा गए। त्यहाँ गएर आर्यातीर्थमा स्नान गरी भगवती आर्याको दर्शन गरे अनि गुह्येश्वरतीर्थमा दर्शन गरे। पशुपतिका परिसरमा रहेका सबै तीर्थहरूमा स्नान गरी भगवती वाग्वतीको आराधना गरे।

त्यसबेला भगवान् श्रीकृष्णले सबैलाई सम्बोधन गर्दै भन्नुभयो- हे देवता हो ! हाम्रो गति भनेकी वाग्वती हुन्। उनले सम्पूर्ण दुर्गति नाश गर्दछिन्। वाग्वती सबैकी पूज्या हुन् र उनले सम्पूर्ण दुःखबाट मुक्त गराउँछिन्। मोक्ष चाहने योगीहरूका निमित्त वाग्वतीले सद्‌गति दिन्छिन्, त्यसैले आफ्नो कल्याण चाहने व्यक्तिले वाग्वतीको बारम्बार पूजा गर्नुपर्छ। कलियुग लागेपछि वाग्वतीलाई शतगङ्गाजस्तै मानी नमस्कार गर्नुपर्दछ। किनकि भगवती वाग्वती वाणीकी अधीश्वरी सरस्वतीका रूपमा रहेकी छन्। सम्पूर्ण लोकलाई तार्ने रुद्रको मुखबाट पैदा भएकी ब्रह्मवाणी सरस्वतीरूपा वाग्वतीदेवीलाई म नमस्कार गर्दछु भनेर भगवान् श्रीकृष्णले वाग्वतीको आराधना गर्नुभयो। त्यसपछि उहाँसँग आएका सबै देवता, ऋषि र यादवहरूले वाग्वतीमा स्नान गरी नेपालका सबै तीर्थमा स्नान गरेको साङ्गता पनि गरे। उनीहरू भगवान् कृष्ण मुखारविन्दबाट नेपालका पुण्यनदी र पुण्यतीर्थहरूको दर्शन, स्पर्शन र दान आदि कर्म गरी अत्यन्त आनन्दित भए।

(हिमवत्खण्ड, प्रकरण- ६, अध्याय- १८५)

## ४.२७ निष्कर्ष

सारस्वत समाराधनामा निरतिशय अभिरुचिका कारण हिमवत्खण्डको गहन अध्ययन र अनुसन्धान गरी तयार गरिएको यस दोस्रो संस्करणको प्रस्तावनाभागको प्रथम परिच्छेदमा ग्रन्थ परिचयको क्रममा हिमवत्खण्ड, स्कन्दमहापुराणको नाममा प्रकाशित आधुनिक रचना हो कि भन्ने तर्कलाई अगाडि सारेर विश्लेषण गरिएको छ। विश्लेषणको आधारमा भन्न सकिन्छ कि मूलरूपमा यो ग्रन्थ द्वापरयुगको उत्तरार्द्धमा वेदव्यासद्वारा रचित स्कन्दमहापुराणकै एउटा खण्ड भए पनि यसमा समय समयमा थपथाप भएको हुनसक्छ। हिमवत्खण्डको प्रथम प्रकाशन, योगीजीको परिचय, योगीजी र उहाँका सह्योगीहरूको पावन अवदानको चर्चा गर्दै हिमवत्खण्डको आभ्यन्तर सौन्दर्यबारे पनि यस प्रस्तावनाभागमा संक्षिप्त चर्चा गरिएको छ। यस प्रसङ्गले हिमवत्खण्डको रचना, रचनाकार, सङ्कलन, सम्पादन, अनुवाद र प्रकाशनको इतिहासलाई जीवन्त तुल्याएको छ।

हिमवत्खण्डको बहुकोणीय आभ्यन्तर विशेषताबारे पाठकहरूलाई तत्त्वबोध र महत्त्वबोध गराउने आशयबाट संक्षेपमा प्रकाश पारिएको छ। यसबाट हिमवत्खखण्डनामक कृति हिमाली सरिता, तीर्थ, कुण्ड, ऋषि, महर्षि र मन्दिरहरूको वर्णनमा मात्र केन्द्रित पौराणिक ग्रन्थ नभई काव्यात्मक सौन्दर्य, बोधसौन्दर्य, सूचनासौन्दर्य, साधनासौन्दर्य र वस्तुगत सौन्दर्यको खजाना पनि हो भन्ने कुरा सर्वसंवेद्य हुनेछ।

हिमवत्खण्डको विषयवस्तुबारे प्रस्तावनाभागको दोस्रो परिच्छेदमा अध्यायगत आधारमा विस्तृत निरूपण गरिएको छ। यस प्रस्तुतिबाट हिमवत्खण्ड ग्रन्थभित्र समष्टिरूपमा रहेका विषयवस्तुको जानकारी पाउँदा पाठकहरूमा ग्रन्थभित्रका विषयहरूको ज्ञानका लागि अभिरुचि पैदा भई सम्बद्ध स्थलको गहन अध्ययनमा उत्सुकता जागृत हुनेछ भन्न सकिन्छ।

प्रस्तावना भागको तेस्रो परिच्छेदमा हिमवत्खण्डका प्रेरणादायक, मननीय र महनीय प्रसङ्गहरू उद्धृत गरी प्रस्तुत गरिएको छ। उक्त प्रसङ्गहरूबाट पाठकहरूलाई नेपाली समाजको प्राचीन आचार-विचार, धर्म, संस्कृति, रुद्राक्ष र शालग्रामजस्ता दिव्य प्रतीकहरू, त्याग, तपस्या, नेपालको भूगोलमा रहेका पवित्र तीर्थ, नदी, कुण्ड, घाट, यज्ञभूमि, भगवान् विष्णुका वराह, बुद्ध आदि अवतार, विश्वशान्तिका अग्रदूत बुद्धको शान्तिसन्देश, नेमुनि एवं नेपालको नामकरण, नेपाल, पाशुपतक्षेत्र र पाशुपती पुरीको महिमा र भगवान् पशुपतिको विलक्षण लीला पाठकहरू विशेष लाभान्वित हुनेछन्।

पछिल्लो परिच्छेदमा सप्तकौशिकी र सप्तगण्डकीको उत्पत्ति, नेपालमण्डलका अनेक नदी, तीर्थ एवं शिवलिङ्ग, विरूपाक्षको तीर्थयात्रा, चौसट्ठी शिवलिङ्गका विशेषता, किरातेश्वर महादेव, अर्जुन र किरातेश्वरको युद्ध, नेपालमा किरातशासन, किरात राजाहरूलाई पराजित गरी लिच्छविहरूको नेपालमा शासन, श्रीकृष्णको सपरिवार यादवहरूका साथ नेपालयात्राजस्ता हिमवत्खण्डका महत्त्वपूर्ण विषयका साथै छिमेकी देशहरूमा रहेका नेपालीहरूका आस्थाकेन्द्र, मानसरोवर, कामाख्या, त्रियुगीनारायण, केदारनाथ, बद्रीनाथ, रुद्रप्रयाग, देवप्रयाग आदि तीर्थहरूको पनि वर्णन गरिएको छ।

पाठकहरूलाई विषयबोध गर्न सजिलो होस् भन्ने उद्देश्यले प्रस्तुत प्रस्तावना भागमा जुन जुन विषय समावेश गरिएका छन् ती सबै नमुनामात्र हुन्। समग्र रहस्यबोधका लागि त पाठकहरू स्वयं नै प्रस्तुत हिमवत्खण्डको अभिनव सम्पादन र अभिनव अनुवादभित्र पसेर गहन अध्ययन एवं अनुसन्धान गर्नमा समर्पित हुनै पर्दछ। राष्ट्रको गौरव र स्वाभिमानलाई उच्च

बनाउने हेतुले गरिएको हिमवत्खण्डमाथिको यस नवीन कार्यलाई पाठकहरूले अभिरुचिपूर्वक अध्ययन एवं अनुसन्धान गरेमा यो परिश्रम अवश्य सार्थक हुनेछ।

हिमवत्खण्डको प्रथम संस्करण योगीजीको महान् प्रयासबाट सम्पन्न भएको तथ्यलाई यस संस्करणले उजागर गरेको छ। यसबाट पाठकहरूले हिमवत्खण्डका गहन विषयहरूको सजिलै रहस्यबोध गर्ने अवसर पाउनेछन्। हिमवत्खण्डको अभिनव सम्पादन, अभिनव अनुवाद एवं परिशिष्टमा समावेश गरिएका दुर्लभ धार्मिक एवं सांस्कृतिक कृतिहरूबाट पाठकहरू लाभान्वित हुँदा ग्रन्थसम्पादक, अनुवादक, प्रकाशक एवं अन्य सह्योगीहरूको श्रम निश्चय नै सार्थक हुनजाने विश्वासका साथ प्रस्तुत यस संस्करणको अभिनव सम्पादन एवं अनुवादका क्रममा जुन जुन महानुभावहरूका ग्रन्थहरू, शोधप्रबन्ध/शोधग्रन्थहरू तथा पत्रपत्रिका आदिको सहयोग लिइएको छ ती सबै ग्रन्थका ग्रन्थकर्ता, शोधकर्ता एवं सम्बद्ध सबै कृतिकारहरूप्रति हार्दिक आभार प्रकट गर्दछु।

अन्तमा, परमपूजनीया माताश्री स्व. दिव्यलक्ष्मी ढकाल, परमपूजनीय पिताश्री स्व. चूडामणि ढकाल, परमयोगिनी वन्दनीया भगवती शक्तिमाता लीलादेवी, परमपूजनीय स्वामी राधाविहारीशरण महाराज एवं यस ग्रन्थका समीक्षक महानुभावहरूप्रति वन्दना र कृतज्ञता अर्पण गर्दै कलम बिसाउँछु।

विनीत
वेणीमाधव ढकाल

तदाद्यनन्ताधरमण्डनोऽभू-
त्तपोमयो लोकफलप्रदोऽसौ ।
हिमालयः सर्वसुराश्रयश्च,
किलाशुतोषाप्तविभूतिरार्यः ॥१२४॥

*(हिमवत्खण्ड, प्रकरण – १, अ. – ७, श्लो. – १२४)*

अर्थ–

भगवान् शिवजीबाट जुन दिन तपस्वी हिमालयले दिव्य विभूतिस्वरूपको ऐश्वर्य प्राप्त गरे त्यसै दिनदेखि उनी पृथ्वीका अलङ्कार, पर्वतशिरोमणि, प्राणीहरूलाई इच्छा लागेको फल प्रदान गर्न समर्थ र सम्पूर्ण देवताहरूका आश्रयस्थल बन्नपुगे ॥१२४॥

नमो गणपतये

श्रीपशुपतये नमः

# हिमवत्खण्डः

## प्रथमोऽध्यायः

### मधुकैटभवधः

यस्यात्मा हिमशैलजा गणपतिः सूर्य्यो हि विष्णुर्हरः,
पञ्चास्यैः सुविभूषितः पशुपतिस्तेषां च पञ्चात्मकैः।
त्रैलोक्यं सचराचरं त्रिगुणजं पञ्चात्मभिः सन्दधे,
योऽजस्रं हि रसादिभिश्च भगवांस्तस्मै नमः शम्भवे ॥१॥

ऋषय ऊचुः

मुनीश्वर ! प्रसादात्ते श्रुतं मेरोः प्रशंसनम्। भूयश्च श्रोतुमिच्छामो माहात्म्यं हिमवद्गिरेः ॥२॥
तत्र कृततपस्यानां[1] देवानाञ्च विशेषतः। माहात्म्यं तच्च तीर्थानां शृङ्गाणां वद नो विभो ॥३॥

लोमहर्षण उवाच

शृणुध्वं विप्रशार्दूला यद्वृत्तान्तं पुराऽभवत्। तयोर्मिथो हि संवादमगस्त्यस्कन्दयोर्गिरौ ॥४॥
माहात्म्यं चैव तीर्थानां हरात्मजं महाविभुम्। पप्रच्छ खलु सेनानीं कुलशैले घटोद्भवः ॥५॥

---

अध्याय- १

मधु र कैटभनामका राक्षसहरूको संहार

जसको आत्माका रूपमा पार्वती, गणेश, सूर्य, विष्णु र रुद्र हुनुहुन्छ, जो सद्योजात, अघोर, तत्पुरुष एवं ईशान नामक पाँच मुखब्रह्मद्वारा सुहाउनु भएको छ, जसले पृथ्वी, जल, तेज, वायु र आकाशमय बनेर निरन्तर रस, रूप, गन्ध, स्पर्श तथा श्रोत्रको रूप लिएर त्रिगुणात्मक चराचरयुक्त तीनै लोकको सिर्जना गर्नुभएको छ, त्यस्ता कल्याणमय (पशुपतिस्वरूप) शिवलाई नमस्कार गर्दछु ॥१॥

ऋषिहरूले भने – हे मुनीश्वर ! हजुरको अनुग्रहले सुमेरुपर्वतको प्रशंसा सुन्यौं। अब फेरि हिमालयपर्वतको महिमा सुन्न चाहन्छौं ॥२॥ हे सर्वव्यापक प्रभो ! हिमालयपर्वतमा तपस्या गर्ने देवता, तीर्थ र ती हिमशिखरहरूको जुन महिमा छ त्यसबारे हामीलाई विस्तारपूर्वक उपदेश गर्नुहोस् ॥३॥

सूतजीले भन्नुभयो – हे उत्तम मुनिहरू हो ! अघि कुलपर्वतमा भएको वृत्तान्त र अगस्त्य एवं कार्तिक स्वामीको बीचमा भएको संवाद सुन्नुहोस्। अघि अगस्त्य मुनिले कुलपर्वतमा बसेर शिवपुत्र महाप्रभु कार्तिक स्वामीसित तीर्थको माहात्म्यबारे सोध्नुभएको थियो ॥४–५॥

---

१. तपःकृतानाम्, इति न.सं.पु. पाठः।

अगस्त्य उवाच

प्रदिष्टं भवता यद्यच्छ्रुतं देवीशयोर्मुखात् । भवान् सर्वज्ञ एवार्य्य ! सर्वज्ञात्त्वद्भवो यतः ॥६॥
पीत्वा तव मुखाम्भोजान्निःसृतं वाङ्मयामृतम् । न तृप्यामि तथा स्कन्द घर्म्मार्त्तः सलिलं यथा ॥७॥
प्रमाणं च सुमेरोर्हि तच्छृङ्गाणां प्रशंसनम् । अधिष्ठानानि देवानां त्वत्प्रसादाच्छ्रुतं मया ॥८॥
भूधराणां यथोत्पत्तिं तीर्थानां तेषु जन्मिनाम् । हिमालयस्य माहात्म्यं वद मे शङ्करप्रिय ! ॥९॥

स्कन्द उवाच

ईश्वरेणैव मे प्रोक्तं मणिमयशिलोच्चये । तत्सर्वं ते प्रवक्ष्यामि समासेन घटोद्भव ! ॥१०॥
भूधराणां धरायाश्च यद्वृत्तान्तमभूत्पुरा । तद्वक्षाम्यधुना सर्वं शृणु मत्तः समाहितः ॥११॥
अभक्ताय सदम्भाय[२] पिशुनाय हि पापिने । नैव कथ्यमिदं धीर ! यदीच्छेत्फलमात्मनः ॥१२॥
आसीदेकार्णवे घोरे सर्वसत्त्वावसानके । विष्वक्सेनस्तमःप्लुतजलशायी सुनिर्जनः ॥१३॥
सर्वलोकांश्च संहृत्य नक्षत्राणीन्दुभास्करौ । जलेनात्मानमाच्छाद्य एकः शेते चिरं विभुः ॥१४॥
अव्यक्तविग्रहो देवस्तेजोमयवपुर्म्मुने ! कल्पं व्याप्य चिरं विष्णुः प्रशेते ब्रह्मणः क्षये ॥१५॥
ईक्षणस्था महामाया मायाच्छादितविग्रहः । ब्रह्माण्डे ज्योतिषां पुञ्जस्तस्येश्वरः स्वयं स्थितः ॥१६॥
कल्पान्ते ब्रह्मणोऽगस्त्य ! दशदिशि तमोयुजि[३] । तस्य नाभौ समुद्भूते सहस्रपत्रपुष्करे ॥१७॥
धाता जजाप तन्मध्ये लोकानुग्रहकारकः । तत्रोद्भूतोऽनिशं ध्येयं[४] सञ्चिन्त्य हृदि शङ्करम् ॥१८॥

---

अगस्त्य मुनिले भन्नुभयो – हजुर सर्वज्ञ हुनुहुन्छ, किनकि सर्वज्ञ सदाशिवबाट नै हजुरको उत्पत्ति भएको हो । हजुरले माता पार्वती र पिता शिवजीको मुखबाट सुन्नुभएका कुरा मलाई बताइसक्नुभएको छ । हे कार्तिक स्वामी ! जसरी घामले आत्तिएको र तिर्खाएको व्यक्ति थोरै पानीले तृप्त हुँदैन, त्यसरी नै हजुरको मुखारविन्दबाट निस्किएको वाङ्मयरूपी अमृतपान गरेर म कहिल्यै तृप्त हुँदैन । मैले हजुरको करुणाबाट सुमेरुपर्वतको प्रमाण, त्यसका शिखरहरूको माहात्म्य र त्यहाँ रहेका देवताहरूका आश्रमहरूको विषयमा सुनें । भगवान् शङ्करका प्यारा हे कार्तिकस्वामी ! अब मलाई हिमालय आदि पर्वत, तीर्थ र त्यहाँ निवास गर्ने प्राणीहरूको उत्पत्तिको, इतिहास बताएर हिमालयको माहात्म्य पनि बताउनुहोस् ॥६–९॥

कार्तिकस्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! भगवान् शङ्करले सुमेरुपर्वतको मणिमय शिखरमा मलाई त्यसबारे जुन उपदेश दिनुभएको थियो त्यो सङ्क्षेपमा बताउँछु । अघि त्यहाँपर्वत तथा पृथ्वीका सम्बन्धमा जुन कुराकानी भएको थियो, त्यो सबै म अहिल्यै भन्दैछु, तपाईंले सावधान भएर सुन्नुहोस् । हे धीर स्वभावका मुनि ! अभक्त, पाखण्डी, वर्तमान र भविष्यको उत्तम फल चाहने प्राणीको अपकार गर्न छुल्याईं गर्ने दुर्जन र पापीहरूलाई यो वृत्तान्त बताउनु हुँदैन ॥१०–१२॥

एकपटक भगवान् विष्णु सम्पूर्ण प्राणी, नक्षत्र, चन्द्रमा र सूर्यलाई संहार गरेर निर्जन, अन्धकारमय र भयङ्कर समुद्रको एकान्त स्थलमा आफूलाई जलले छोपेर एकाकी शयन गर्नुभयो । अव्यक्त स्वरूप र तेजोमय शरीर धारण गर्ने भगवान् विष्णु सृष्टिकर्ता ब्रह्माजीको समेत अन्त्य भएपछि एक कल्पसम्म शरीरलाई गुप्त राखेर समुद्रमा शयन गर्नुभएको थियो । त्यस अवसरमा भगवान् विष्णुका आँखाका सामु महामाया विराजमान हुनुहुन्थ्यो । भगवान् विष्णु महामायालाई आवरण बनाई उहाँद्वारा सम्पूर्ण शरीर ढाकेर ब्रह्माण्डसम्म ज्योतिको पुञ्ज फैलाई त्यसै ज्योतिमाथि विराजमान हुनुभयो । हे अगस्त्य मुनि ! कल्पको अन्त्यमा दशै दिशा अन्धकाराच्छन्न भएको बेला विष्णुको नाभिमा उत्पन्न हजारपत्र भएको कमलको माझमा प्रकट भएर बस्नुभएका लोककल्याणकारी ब्रह्माजी आफ्नो हृदयमा निरन्तर भगवान् शङ्करको ध्यान गर्दै उहाँको मन्त्रजपमा तत्पर हुनुभयो ॥१३–१८॥

---

२. अभक्ताय च दम्भाय,, इति न.सं.पु. पाठः । ३. तमःप्लुते,, इति न.सं.पु. पाठः । ४. ततोद्भुतोऽनिशम्,, इति न.सं.पु. पाठः ।

ततो नारायणो देवः कर्णाभ्याञ्च मलं मुने ! अङ्गुलीभ्यां कनिष्ठाभ्यामादायाक्षिपदम्भसि ॥१९॥
समुद्भूतौ ततो दैत्यौ तस्मादम्भसि भीषणौ। मधुकैटभसंज्ञौ तौ जलमध्ये व्यवस्थितौ ॥२०॥
तीक्ष्णदंष्ट्रौ मलोद्भूतौ तस्माद्दैत्यात्मकौ मुने ! दिव्यानामयुताब्दान्ते वर्द्धमानौ प्रकोपिनौ ॥२१॥
चेरतुस्तस्य तौ पार्श्वे तदा कर्णमलोद्भवौ। करालवदनौ भीमौ महाकायौ महाबलौ ॥२२॥
नागायुतबलोपेतौ पीनपादभुजोत्तमौ। सर्वयुद्धविशालौ तौ श्यामाङ्गौ चक्रलोचनौ ॥२३॥
युद्धायाऽऽस्फाल्य हस्तौ तौ करतालं प्रचक्रतुः। अवलोक्य दिशः सर्वाः कृत्वेति कोऽपि तिष्ठति ॥२४॥
अदृष्ट्वा कं च सञ्चिन्त्य कुर्याव:[५] किमथो सकृत्। ततो ददृशतुः पद्मं दीर्घनालं महोज्वलम् ॥२५॥
गत्वा तदन्तिकं दैत्यौ दुरात्मानौ प्रकोपिनौ। रुरुहतुः सुनालं तौ पद्मं किञ्जल्कभूषितम् ॥२६॥
तत्र दृष्ट्वा महात्मानं पद्मयोनिं महाप्रभम्। जपन्तं ध्यायमानं वै पञ्चवक्त्रं चतुर्भुजम् ॥२७॥
अक्षमालाधरं शान्तमीषत्प्रहसिताननम्। हिरण्यगर्भमाद्यं तं स्वतेजोभिः प्रसारितम् ॥२८॥
पितामहं च लोकानां तप्तकाञ्चनसन्निभम्। दिव्याम्बरधरं प्राज्ञं दिव्याभरणभूषितम् ॥२९॥
व्याचष्टाते वचस्तस्मै[६] तौ मधुकैटभौ मुने ! पितामहाय वीरौ च प्रकृत्या कोपिनौ तदा ॥३०॥

मधुकैटभावूचतुः

को भवानत्र किं कार्यं किं करोति किमद्भुतम्। कस्मादागत्य सुस्थोऽसि कस्य किं वाऽत्र कथ्यताम् ॥३१॥
शून्ये चाम्भोमये भीष्मे नाभिव्यक्तौ दिशां तथा।[७] जप्तवान्वै कथं पद्मे बह्वास्य ! नौ वद ध्रुवम् ॥३२॥

---

हे मुनि ! त्यसपछि ज्योतिर्मय शय्यामा शयनमुद्रामा विराजमान भगवान् नारायणले आफ्ना कान्छी औंलाहरूद्वारा दुबै कानबाट कानेगुजी निकालेर पानीमा प्रक्षेपण गर्नुभयो। त्यस कानेगुजीबाट जलमा मधु र कैटभ नामका डरलाग्दा दुई दैत्य पैदा भए र त्यसै जलमा बस्न थाले। विष्णुका कानेगुजीबाट जन्मिएका र तीखा दाह्रा भएका ती दैत्य दिव्य दश हजार वर्षपछि विशाल शरीरसहितले युक्त भई ज्यादै क्रोधको मुद्रामा रहेका देखिए। त्यसपछि कानेगुजीबाट पैदा भएका, डरलाग्दा, विकराल मुख भएका, ठूला शरीर भएका र अत्यन्त बलिया ती दैत्य विष्णुको वरिपरि घुम्न थाले ॥१९-२२॥

दश हजार हात्तीको बलबराबर तिनीहरूको बल थियो। तिनका पाउ र हात मोटा तथा राम्रा थिए। चक्रजस्तो आँखा भएका ती दैत्यहरूका अङ्ग श्याम वर्णका थिए। ती दुबै दैत्य सम्पूर्ण युद्धकलाका विशेषज्ञ पनि थिए। ती दुबै दैत्यले हामीसँग युद्ध गर्नसक्ने कोही छ कि भनेर चारै दिशातिर हेर्दै दुई हात बजाएर करतलध्वनि प्रकट गरे। उनीहरूले कसैलाई पनि नदेखेपछि अब के गरौं भनेर बारम्बार चिन्तन गरिरहेको अवसरमा लामो डाँठ भएको अत्यन्त उज्ज्वल कमललाई देखे। त्यसपछि दुष्ट, रिसाहा ती दैत्यहरू ब्रह्मासन कमलको नजिकमा गएर केसरद्वारा सुहाएको सुन्दर कमलनालमा आरोहण गरे। त्यहाँ उनीहरूले पाँच मुख र चार हातले सुहाउनुभएका, तेजस्वी, जप तथा ध्यानमा तत्पर महात्मा ब्रह्माजीलाई देखे ॥२३-२७॥

ब्रह्माजीले रुद्राक्ष माला लगाउनुभएको थियो र शान्त स्वभावका देखिनुहुन्थ्यो। उहाँ प्रथम हिरण्यगर्भ हुनुभएकाले उहाँको आफ्नो तेज चारैतिर फैलिएको थियो। संसारका पितामह ब्रह्माजी उजिल्याएको सुनजस्तै तेजिला र प्रज्ञामूर्ति देखिनुभएको थियो। उहाँले दिव्य वस्त्र र अलङ्कार पहिरिनुभएको थियो। स्वभावैले रिसाहा र शूरा ती मधु र कैटभले ब्रह्माजीसँग कुरा गर्न थाले ॥२८-३०॥

मधु र कैटभले सोधे- तपाईं को हुनुहुन्छ ? के काम छ ? कस्तो आश्चर्य ! कताबाट आएर यहाँ बस्नुभएको छ ? तपाईं कसको के काम गर्दै हुनुहुन्छ ? हे चारमुख भएका व्यक्ति ! जलैजल मात्र भएको डरलाग्दो, दिशाहरू पनि नदेखिने, निर्जन यस ठाउँमा कमलमा बसेर किन जप गर्दै हुनुहुन्छ ? हामीलाई बताउनुहोस् ॥३२॥

---

५. अदृष्टौ कं च सञ्चिन्त्य कुर्वावः इति न.संपु. पाठः। ६.व्याचष्टुर्वचस्तस्मै, इति न.सं.पु. पाठः।
७. अव्यक्ते च दिशां तथा, इति न.सं.पु.पाठः।

ब्रह्मोवाच

ध्यानस्थोऽहं सुखं वीरौ सर्वभूतदयाकरम् । जननाय च भूतानां भूतेश्वरं परात्परम् ॥३३॥

ब्रह्माऽहं सर्वभूतानां कर्त्ता चाऽस्मि महाबलौ । ईश्वरं ध्यायमानो हि जगदानन्दरूपिणम् ॥३४॥

न स्थातव्यं चिरं कालं गच्छतं हि यथागतौ ।[८] यो गच्छति रहःस्थाने प्राप्नोति चाऽऽपदं भृशम् ॥३५॥

मधुकैटभावूचतुः

स्थातुं नैवाऽत्र लोकेश ! आगतौ युद्धकाङ्क्षया । कण्डूयन्त्यावयोर्हस्ता युद्धलालसिनोऽधुना ॥३६॥

विद्धि युद्धेच्छुकौ चाऽऽवामत्र प्राप्तौ त्वदन्तिकम् ।[९] अतश्च नौ महाब्रह्मन् ! युद्धं त्वं देहि साम्प्रतम् ॥३७॥

ददासि युद्धं खलु नोऽधुना त्वमुपस्थिते च त्वयि चेज्जयेव ।

प्रवर्द्धयावः सुवरैर्भवन्तं व्यतिक्रमे चेन्नतु तिष्ठ जीवन् ॥३८॥

नो चेद्ददासि युद्धं भो आवयोर्हि रणोत्कयोः[१०] । उत्पाट्याब्जोद्भवं क्षिप्रं त्वां पद्मं लुण्ठयावहे ॥३९॥

स्कन्द उवाच

वचो निशम्य साङ्ग्राम्यं विप्रलापं पितामहः । मनसा दूयमानोऽसौ तूष्णीमासीत्तदा मुने ! ॥४०॥

किं करोमि क्व गच्छामि कुतो मुञ्चामि साम्प्रतम् । निद्रयाच्छादितो विष्णुः कथं जागर्ति विश्वजित् ॥४१॥

इति सञ्चिन्त्य विश्वात्मा प्रबोधाय हरेः पुनः । स्तवं चक्रे हि निद्रायाः सर्वलोकोपकारिणम् ॥४२॥

---

ब्रह्माजीले भन्नुभयो – हे महाबली वीर हो ! प्राणीहरूको सृष्टि गरी संसार भर्नका लागि सम्पूर्ण प्राणीहरूमाथि दया गर्ने, परभन्दा पनि पर रहनुभएका, प्राणीहरूका स्वामी परमेश्वरको आनन्दपूर्वक ध्यान गरिरहेको छु । महाबली दैत्य हो ! म सबै प्राणीको कर्ता ब्रह्मा हुँ । म जगत्का स्वामी आनन्दस्वरूप ईश्वरको ध्यान गरिरहेको छु । हे वीर हो ! तिमीहरू धेरै समयसम्म यहाँ नबस, जसरी आयौ, त्यसरी नै जाओ । जुन प्राणी धेरै समयसम्म यस एकान्त स्थलमा बस्छ, त्यसले ठूलो विपत्ति भोग्नुपर्छ ॥३३–३५॥

मधु र कैटभले भने – हे लोकका अधिपति ! हामी यहाँ बस्न भनेर आएका होइनौं । अहिले युद्ध गर्न चाहने हामीहरूका हात चिलाएका छन् । हे महाब्रह्मन् ! हामी युद्धको कामनाले तपाईंको नजिक आएका छौं । हामीलाई अहिले युद्ध दिनुहोस् अर्थात् लड्न आउनुहोस् । यदि तपाईंले युद्ध गर्न भनी उपस्थित भएका हामीलाई युद्ध गरेर जित्नुभएछ भने वर दिएर तपाईंलाई समृद्धिसम्पन्न तुल्याउनेछौं, तपाईं हार्नुभयो भने जीवित रहनुहुनेछैन । हे ब्रह्मन् ! युद्ध गर्न खोज्ने हामीसित लड्नुभएन भने तुरुन्त कमलबाट पैदा भएका तपाईंको आसन कमललाई नै जरैदेखि उखेलेर लैजानेछौं ॥३३–३९॥

कार्तिकस्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! तिनीहरूको युद्धसम्बन्धी यस्तो व्यर्थको बकबक सुनेर ब्रह्माजीले मनमनै खिन्न हुँदै मौनमुद्रा धारण गर्नुभयो । के गरूँ ? कहाँ जाऊँ ? अब कताबाट छुट्कारा पाऊँ ? सब प्राणीहरूको हित गर्ने तर अहिले निदाउनुभएका विष्णु कसरी जाग्नुहुन्छ ? यस्तो विचार गर्दै विश्वात्मा ब्रह्माजीले सबै लोकको हित गर्ने भगवती महामायाको स्तुति गर्न लाग्नुभयो ॥४०–४२॥

---

८. यथागतौ हि गच्छतम्, इति न.सं.पु.पाठः ।

९. युयुत्सवौ विद्धि चावामत्रागतौ त्वदन्तिकम्, इति न.सं.पु.पाठः ।

१०. युयुत्सवोः, इति न.सं.पु.पाठः ।

ब्रह्मोवाच

संहृत्य सङ्कुलाल्लोकान्संप्लुत्यात्माभसा जगत्। एका शेते हरेर्नेत्रे मोहयन्ती हरिं शिवे ॥४३॥
नमस्तस्यै विमोहिन्यै जगतां या प्रमोहिनी। अन्तस्था मोहरूपेण शर्म्मकर्त्री विवेकिनी ॥४४॥
वैष्णवी विश्वरूपिण्यै विश्वेश्वरि नमोस्तुते। व्योमस्थे व्योमरूपायै तेजोरूपे नमोस्तुते ॥४५॥
मोहिन्यै विश्वमोहिन्यै मङ्गलायै नमो नमः। शिवायै शिवरूपिण्यै मायायै ते नमो नमः ॥४६॥
मेघरूपे रसक्लिन्ने क्षितिरूपे नमोस्तु ते। बीजकर्त्र्यै निर्बीजायै भैषज्यायै नमोस्तु ते ॥४७॥
पञ्चानामात्मरूपिण्यै भोक्त्रिण्यै भोज्यरूपिणि। कोषस्थे बुद्धिरूपिण्यै चित्स्वरूपे नमोस्तु ते ॥४८॥
अभिमानस्वरूपिण्यै हृद्रूपायै नमोस्तु ते। धैर्य्यायै समधैर्य्यायै विवेकिन्यै नमो नमः ॥४९॥
मातः क्षेत्रज्ञरूपायै जीवरूपे नमोस्तु ते। मेध्यायै शब्दरूपिण्यै मातृकायै नमो नमः ॥५०॥
एकमात्रे द्विमात्रायै बहुमात्रे नमोस्तु ते। अर्द्धमात्रास्वरूपायै त्रिस्वरायै नमो नमः ॥५१॥
त्रिगुणात्मकरूपिण्यै गुणातीते नमो नमः। इच्छाज्ञानक्रियाशक्तित्रिविधायै नमो नमः ॥५२॥
महामाये महाजिह्वे महादंष्ट्रे नमो नमः। कालरूपे महादेवि कालरात्रि नमोस्तु ते ॥५३॥
रक्ष रक्षाम्बिके मां त्वं दैत्यपापग्रहार्दितम्। निद्रेऽलक्ष्ये जगन्मातर्ज्जगत्कोषे नमोस्तु ते ॥५४॥

---

ब्रह्माजीले भन्नुभयो – हे शिवा ! सम्पूर्ण प्राणीको संहार गरी सबै जगत्लाई पानीमा डुबाएर हरिलाई मोहित तुल्याउँदै हजुर हरिको आँखामा एकाकी शयन गरिरहनुभएको छ। संसारलाई मोहित तुल्याउँदै मोहको रूप लिएर विष्णुको शरीरभित्र रहेकी कल्याणकारिणी विवेकवती हे देवी ! हजुरलाई नमस्कार छ। हे विश्वेश्वरी ! हे विश्वरूप लिने विष्णुकी शक्ति ! हजुरलाई प्रणाम गर्दछु। आकाशमा विहार गर्ने र आवश्यकता हुँदा आकाश तथा तेजको स्वरूप लिनुहुने हजुरलाई प्रणाम गर्दछु। विश्वलाई मोहित तुल्याउने मोहिनी अवतार लिएर देवताहरूको कल्याण गर्नुहुने, कल्याणदायिनी शिवशक्तिको रूपमा रहनुभएकी महामायारूप हजुरलाई बारम्बार प्रणाम गर्दछु ॥४३-४६॥

कहिले बादलका रूपमा रहनुहुने र कहिले रसले भिजेकी पृथ्वीको रूपमा रहनुहुने हजुरलाई नमस्कार छ। संसाररूपी फलको बीउ तयार गर्नुहुने तर आफू निर्बीज अर्थात् कारणरहित हुनुभएकी बीजरूपा अर्थात् औषधिस्वरूपा हजुरलाई नमस्कार छ। पाँचै तत्त्वकी आत्मा, भोक्ता र भोज्यरूपमा संसारमा व्याप्त भएकी, पञ्चकोशमा विराजमान, बुद्धि र चित्स्वरूपद्वारा संसारलाई प्रकाशित गर्नुहुने हजुरलाई नमस्कार छ। कहिले अभिमानका रूपमा चमत्कृत हुनुहुने र कहिले करुणामयी बनेर हृदयलाई द्रवित गराउनुहुने सम्पूर्ण प्राणीहरूकी हृदयको रूपमा रहनुभएकी हजुरलाई नमस्कार छ। धैर्यको रूप लिएर सम-विषम परिस्थितिमा सर्वत्र सबैले धैर्यधारण गर्नुपर्छ भन्ने उपदेश दिन धैर्यकै रूपमा रहनुभएकी विवेकमूर्ति हजुरलाई बारम्बार नमस्कार छ ॥४७-४९॥

हे आमा ! क्षेत्रज्ञरूप भएकी अर्थात् जीवात्मासहित प्रकृतिको रूपमा रहेकी र जीवको रूप लिएर संसारमा चलखेल गर्नुहुने हजुरलाई नमस्कार छ। पवित्र, शब्दरूपमा रहेकी र अ उ म यी तीन वर्णकी ॐकार मातृकालाई बारम्बार नमस्कार छ। एक मात्रा, दुई मात्रा र धेरै मात्राको रूप लिनुहुने हजुरलाई नमस्कार छ। आधा मात्राको रूपमा रहनुहुने उदात्त, अनुदात्त र स्वरित गरी तीन स्वरले सम्पन्न भएकी हजुरलाई बारम्बार नमस्कार छ। त्रिगुणस्वरूपा भईकन पनि तीनै गुणदेखि अलग रहेकी हजुरलाई नमस्कार छ। इच्छा, ज्ञान र क्रियानामक तीन शक्तिद्वारा तीन स्वरूप धारण गर्नुहुने हजुरलाई बारम्बार नमस्कार छ ॥५०-५२॥

लामो जिब्रो भएकी र लामो दाह्राले गर्दा भयङ्कर देखिनुहुने महामायालाई बारम्बार नमस्कार छ। कालरूप भएकी हे महादेवी ! हे कालरात्रि ! हजुरलाई नमस्कार छ। हे आमा ! पापकै पुञ्जका रूपमा रहेका दैत्यहरूबाट म आत्तिएको छु, मेरो रक्षा गर्नुहोस्। हे निद्रादेवी ! जान्न नसकिने स्वरूप भएकी, जगत्की आमा र जगत्की निधिरूपा हजुरलाई नमस्कार छ ॥५३-५४॥

निद्रास्तवं महापुण्यं संकटस्थोऽपि वा पठेत्। सर्वपापैर्विनिर्मुक्तो लभेत वरमीप्सितम् ॥५५॥
नित्यैश्वर्य्यमवाप्नोति रुजः शान्तिं ग्रहोद्भवम्। धनं धान्यं सुताञ्जायां कालरात्र्याः प्रसादतः ॥५६॥
पठेत् श्राद्धे च पितरो यान्ति तृप्तिं समायुतम्।[११] दानेऽक्षयमवाप्नोति लभेत विजयं रणे[१२] ॥५७॥

स्कन्द उवाच

एवं या संस्तुता निद्रा ब्रह्मणामिततेजसा। सन्तुष्टा सा तदा देवी सञ्जहौ[१३] विष्णुमव्ययम् ॥५८॥
प्रबुद्धयासौ महाविष्णुर्म्मायात्यक्तकलेवरः। सन्ददर्श महात्मानौ गर्जन्तौ तौ[१४] प्रकोपिनौ ॥५९॥
अन्योन्यं भाषमाणौ तौ पद्ममुच्छेत्तुमुद्यतौ। पद्मोपरिस्थितौ दैत्यौ ब्रह्माणं हन्तुमुद्यतौ ॥६०॥
उवाच वचनं विष्णुरसुरौ मधुकैटभौ। भो भो दैत्यो दुरात्मानौ अत्रागत्य किमुच्यताम् ॥६१॥
इति श्रुत्वा वचो दैत्यौ विष्णुना परिभाषितम्। क्रोधाविष्टौ महाकायौ कटुकं कर्णविप्रियम् ॥६२॥
ततो विसृज्य धातारं दुद्रुवतुर्महाविभुम्। युद्धे कण्डूयमानौ तौ महामायाविमोहितौ ॥६३॥
तेषां युद्धं महच्चासीत्सर्वसत्त्वभयङ्करम्। अन्योन्यं परिसंजघ्नुस्तलैर्मुष्टिप्रहारकैः ॥६४॥
बाहुयुद्धं ततोऽगस्त्य चक्रुर्मध्येऽम्भसां हि ते। दिव्यवर्षसहस्राणि पञ्च वै लोमहर्षणम् ॥६५॥
कृत्वा युद्धं ततो विष्णुरुवाच वचनं तदा। भो भो युद्धविशालौ वां नानायुद्धपराक्रमैः ॥६६॥
सन्तुष्टोऽहं महाबाहू दास्यास्यद्य यदीप्सितम्। वां सर्वदं हि मत्वा मां याचेथां तं[१५] युवां वरम् ॥६७॥

मधुकैटभावूचतुः

आवां दैत्यौ महावाहो याचावहे कथं वद[१६]। आवां ते सम्प्रदास्यावो वरं वृणीष्व चावयोः ॥६८॥

---

जसले सङ्कट परेको बेलामा निद्रादेवीको यो अत्यन्त पवित्रस्तुति गर्दछ त्यो व्यक्ति सबै पापबाट मुक्त भएर इच्छा लागेको वर प्राप्त गर्न समर्थ हुनेछ। सधैं यो स्तुति पाठ गर्ने व्यक्तिले ऐश्वर्य पाउँछ त्यसको भोगाइभित्र रहेका ग्रहबाट उत्पन्न बाधा तथा रोगहरू शान्त हुन्छन्। त्यसले कालरात्रिको अनुग्रहले धनधान्य, छोरा र उत्तम पत्नी प्राप्त गर्दछ। यो स्तोत्र श्राद्धकालमा पाठ गरिन्छ भने पाठ गर्ने व्यक्तिका पितृहरू दशहजार वर्षसम्म तृप्त हुन्छन्। जति दान गरे पनि सम्पत्ति सकिदैंन, त्यसले गरेको दान अक्षय हुन्छ र त्यसले युद्धमा विजय प्राप्त गर्दछ ॥५५-५७॥

स्वामी कार्तिकेयले भन्नुभयो - तेजस्वी ब्रह्माजीले यसरी स्तुति गरेपछि प्रसन्न भएकी निद्रादेवीले अविनाशी विष्णुलाई जगाउनुभयो। मायाबाट शरीरलाई मुक्त गराएर जाग्नुभएका महाविष्णुले महत्त्वाकाङ्क्षी भएर गर्जिरहेका रिसाहा दैत्यहरूलाई देख्नुभयो। त्यसबेला परस्पर वार्तालाप गर्दै कमल उखेल्न लागेका दुई दैत्य त्यस कमलमाथि बसेका ब्रह्माजीलाई मार्न तयार भएका थिए। त्यसै समयमा भगवान् विष्णुले ती भयङ्कर मधु र कैटभ नामका दैत्यलाई सम्बोधन गर्दै भन्नुभयो - हे दुरात्मा दैत्य हो ! यहाँ आएर के गर्न चाहन्छौ ? ॥५८-६१॥

विष्णुले भनेको यस्तो कर्णकटु कठोर बोली सुनेर विशालकाय ती दुवै दैत्य क्रुद्ध भए। त्यसपछि महामायाबाट मोहित भई युद्ध चाहने ती दैत्य ब्रह्माजीलाई छाडेर विष्णुतिर लम्किए। भगवान् विष्णु र तिनीहरूको बीचमा सम्पूर्ण प्राणीहरूमा त्रास पैदा गर्ने खालको महायुद्ध भयो। तिनीहरूले परस्परमा मुडकी र मुड्कीले हानाहान गरे। हे अगस्त्य मुनि ! त्यसपछि तिनीहरूले पानीमा दिव्य पाँच हजार वर्षसम्म रोमाञ्च पैदा गराउने खालको युद्ध लडेका थिए॥६२-६५॥

धेरै समय लडिसकेपछि विष्णुले तिनीहरूलाई भन्नुभयो - युद्धमा निपुण हे दैत्य हो ! तिमीहरूको अनेक प्रकारको युद्ध र पराक्रम देखेर म सन्तुष्ट भएँ। हे महाबाहु दैत्य हो ! इच्छा लागेको वर दिन्छु, मलाई सबै कुरा दिन सक्ने ठानेर तिमीहरू वर माग्न सक्छौ ॥६६-६७॥

मधु र कैटभले भने - हामी ठूला दैत्यले तिमीसित के वर मागौं ? बरु हामी नै तिमीलाई वर दिन्छौं, हामीसित वर माग ॥६८॥

---

१०. श्राद्धकाले पठेत् तृप्ताः पितरो यान्ति समायुतम्, इति न.सं.पु.पाठः। ११ सङ्ग्रामे विजयं लभेत् इति न.सं.पु. पाठः। १३. सञ्जहे, इति न.सं.पु.पाठः। १४. गर्ज्जमानौ, इति न.सं.पु.पाठः। १५. याचेयाथां इति न.सं.पु.पाठः। १६. त्वां कथं याचयावहे, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

निशम्येति वचो विष्णुः सर्वभूतोद्भवाय वै। ययाचे तौ जगद्धेतोस्तयोर्वधं वरं पुरा ॥६९॥

यदि दत्तं वरं मह्यं सर्वलोकोपकारकम्। युवयोर्निधनं वीरौ तन्मे दत्थ इदं ध्रुवम् ॥७०॥

मधुकैटभावूचतुः

एवमस्तु तथा विष्णो यथा वदसि तत्तथा। व्योम्नि जले न हन्तव्यौ स्थले वावां विशेषतः ॥७१॥

स्कन्द उवाच

एवमस्तु प्रतिश्रुत्य भगवान् भूतभावनः। गृहीत्वोरौ समारोप्य चक्रेणाशु जघान तौ ॥७२॥

निहत्यैवं महाकायौ बहुयोजनविस्तृतौ। जले चिक्षेप तन्मांसं छित्त्वा चक्रेण विग्रहौ ॥७३॥

ततोऽर्णोमांसयोगेन तन्मेदसा समाप्लुता। तस्माद् भूमिः समुद्भूता दिव्यकल्पसमापने[१७] ॥७४॥

सा दिव्यायुतवर्षान्तेऽभवेद्गाढतरा गुरुः। नानामृद्ग्रावसङ्कीर्णा समाच्छन्नजलाचला[१८] ॥७५॥

ततो वराहेन धृता हि सा या स्थिरेति धीरैः कथिता च शश्वत्।
तन्मेदसः सञ्चरणेन तस्या भूयश्च नाम द्विज मेदिनीति ॥७६॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे पुष्करप्रादुर्भावो नाम प्रथमोऽध्यायः ॥१।

---

कार्तिक स्वामीले भन्नुभयो – तिनीहरूको वचन सुनेर विष्णुले सम्पूर्ण प्राणीहरूको सृष्टिका लागि तिनीहरूको वध गर्ने उद्देश्यले वर माग्नुभयो – हे वीर हो ! सबै लोकको उपकारका निमित्त यदि मलाई वर दिन्छौ भने म तिमीहरूकै मृत्युको वर माग्दछु। यसमा संशय छैन ॥६९–७०॥

मधु र कैटभले भने – हे विष्णु ! ठीक छ जे भन्छौ, त्यही दिन्छौं तर तिमीले हामीलाई आकाश वा पानीमा मार्न पाउँदैनौ ॥७१॥

कार्तिक स्वामीले भन्नुभयो – भगवान् विष्णुले हुन्छ, त्यसै गर्छु भनेर तिनीहरूलाई तिघ्रामा राखी तुरुन्त चक्र प्रहार गरेर संहार गर्नुभयो। धेरै योजन फैलिएको विशाल शरीर भएका ती दैत्यहरूलाई मारेर विष्णुले तिनीहरूको शरीरलाई चक्रले काटी मासुका टुक्रा पानीमा फ्याँक्नुभयो। त्यसपछि मासु र बोसाले समुद्र भरियो।

दिव्य करोड वर्ष बितेपछि तिनीहरूकै मासु र बोसाबाट पृथ्वी पैदा भइन्। दिव्य दश हजार वर्ष बितेपछि पृथ्वी भारी भइन् र माटो एवं ढुङ्गाले भरिएर पानीभित्रै अचल भएर बसिन् ॥७२–७५॥

हे अगस्त्य मुनि ! त्यसपछि भगवान् विष्णुका अवतार वराहले उठाएर ल्याई पृथ्वीलाई स्थिर गराएपछि उनलाई विद्वान्हरूले स्थिरा भने। दैत्यको मेद अर्थात् बोसो पृथिवीमा फैलिएको हुँदा उनी मेदिनी नामबाट जगत्मा प्रसिद्ध भइन् ॥७६॥

परम्बा वाग्वादिनी भगवतीको असीम अनुकम्पाबाट पोरकनी पाल्पा निवासी
पतिव्रताशिरोमणि स्वर्गीय माताश्री दिव्यलक्ष्मी ढकाल र सज्जनमुकुटमणि स्वर्गीय पिताश्री चूडामणि ढकालका
कनिष्ठ पुत्र नेपाल संस्कृत विश्वविद्यालय सेवा आयोगका अध्यक्ष प्रा. डा. वेणीमाधव ढकालद्वारा
महर्षि वेदव्यासरचित स्कन्दमहापुराणअन्तर्गत हिमवत्खण्डको
अभिनव सम्पादन एवं नरहरिनामक नेपाली भाषानुवादसहितको
हिमालयदिक्पालप्रकरणको प्रथम अध्याय पूरा भयो ॥

---

१७. दिव्यकोटिसमागते, इति न.सं..पु.पाठः।

१८. चाच्छन्नसलिलाचला, इति न.सं..पु.पाठः।

# अथ द्वितीयोऽध्यायः

## भगवता वराहेण पृथिव्या उद्धारः

### अगस्त्य उवाच

कथं समुद्धृता भूमिर्वराहेणाऽमितौजसा। प्रजायते महच्चित्रं तन्मे स्वान्ते षडानन ॥१॥
अद्भुतो हि वराहोऽसावुत्पत्तिं[1] तस्य मे वद। तस्यामद्रीन् कथं धाता ससर्ज सर्वजीविनः ॥२॥

### लोमहर्षण उवाच

पृच्छत्येवं कुम्भजेऽसौ महीवृत्तं द्विजोत्तमाः।[2] व्याचष्टे भगवान् स्कन्दस्तस्मै तद्धेतुकं वचः ॥३॥

### स्कन्द उवाच

सुदृढां मेदिनीं प्रेक्ष्य तां निम्नोच्चविवर्ज्जिताम्। विस्तीर्णां विशिखां मृत्स्नां मुमोद स प्रजापतिः ॥४॥
एतस्यां वरमेदिन्यां कथं सृष्टिर्भविष्यति। विना कृपां महेशस्य सृष्टिस्थितिहरात्मनः ॥५॥
ततो ब्रह्मा जगद्धाता सर्वलोकोपकारकः। संसृष्ट्यै सर्वलोकानां चकार शूलिनः स्तवम्[3] ॥६॥
प्रणम्य शिरसा रुद्रं वाङ्मनोविग्रहैर्नमन्। मूर्ध्न्यञ्जलिं प्रबद्ध्याऽसौ परिक्रम्य पुनः पुनः ॥७॥

### ब्रह्मोवाच

ॐ नमोऽस्तु व्योमकेशाय तारकाख्याय वै नमः। तारकेशाय देवाय तारकस्थाय वै नमः ॥८॥
नम आनन्दरूपाय नित्यानन्दाय वै नमः। निरञ्जनाय नन्दाय पूर्णानन्दाय शूलिने[4] ॥९॥

---

## अध्याय- २

## भगवान् वराहद्वारा पृथ्वीको उद्धार

अगस्त्य मुनिले भन्नुभयो – हे कार्तिकस्वामी ! अत्यन्त पराक्रमी वराह भगवान्ले पृथ्वीलाई पानीबाट कसरी बाहिर ल्याउनुभयो ? यस कुराले मेरो हृदयमा आश्चर्य पैदा भएको छ। अद्भुत वराहरूप भगवान्को उत्पत्ति कसरी भयो ? यस्तै ब्रह्माजीले पृथ्वीमा पर्वत तथा सकल प्राणीहरूको सृष्टि कसरी गर्नुभयो ? त्यो कुरा पनि मलाई बताउनुहोस् ॥१-२॥

शौनकादि ऋषिहरूलाई लोमहर्षणले भन्नुभयो – हे ऋषिहरू हो ! यसप्रकार अगस्त्य मुनिद्वारा सोधिएका भगवान् कार्तिक स्वामीले उहाँलाई ती सबैको उत्पत्तिको गूढ रहस्य बताउनुभयो ॥३॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! ब्रह्माजी समथर मैदानका रूपमा फैलिएकी र मृत्तिकामय दृढ पृथ्वीलाई देखेर प्रसन्न हुनुभयो। सृष्टि, स्थिति तथा प्रलयकर्ता महेश्वरको कृपा नभई यस सुन्दर पृथ्वीमा कसरी सृष्टि सम्भव होला र भन्ने सोचेर सम्पूर्ण लोकको उपकार गर्ने सृष्टिकर्ता ब्रह्माजीले प्राणीहरूको सृष्टि गर्ने सामर्थ्यप्राप्तिका निमित्त शिर, मन, वचन र शरीरद्वारा भगवान् शिवजीलाई नमन गर्नुभयो र शिरमा अञ्जलि राखेर बारम्बार शिवजीको परिक्रमा एवं नमस्कार गर्दै भगवान् शिवजीको स्तुति गर्न लाग्नुभयो ॥४-७॥

ब्रह्माजीले भन्नुभयो – आकाश नै केश भएकाले व्योमकेश नामबाट प्रसिद्ध हुनुभएका, तारकमन्त्र ॐकारबाट सम्बोधन गरिनुहुने, ताराहरूका ईश्वर, तारामा बस्ने वा तारकका रूपमा विद्यमान हुनुभएका एवं संसारलाई तार्ने तारकनामक परमात्मा शङ्कर भगवान्लाई मेरो नमस्कार छ। आनन्दस्वरूप भगवान्लाई नमस्कार छ। नित्यानन्दस्वरूप, पूर्णानन्दस्वरूप र निरञ्जनस्वरूप त्रिशूलधारी भगवान् शिवलाई नमस्कार छ ॥८-९॥

---

१. वराहोऽसौ उत्पत्तिम्, इति न.सं.पु.पाठः।
२. इत्येव पृच्छ्यमानेसौ कुम्भजेन द्विजोत्तमाः, इति न.सं.पु.पाठः।
३. स्तवञ्चकार शूलिनः, इति न.सं.पु.पाठः।
४. पूर्णानन्दाय नन्दाय निरञ्जनाय शूलिने, इति न.सं.पु.पाठः।

नमो मान्याय मोक्षाय मङ्गलाय च मानिने। हृद्बुद्धिचित्तरूपाय परमाय परात्मने ॥१०॥
नमः शर्वाय भीमाय शम्भवे स्थाणवे नमः। शिवाय शितिकण्ठाय शङ्कराय महात्मने ॥११॥
नमो वायुशरीराय पञ्चाङ्गाय नमो नमः। वामदेवाय विश्वाय व्योमरूपाय वै नमः ॥१२॥
नमो योगाय यज्ञाय यज्ञरूपाय योगिने। योगेश्वराय योगाय योगाचार्य ! नमो नमः ॥१३॥
नमो भवाय भव्याय भूतानां पतये नमः। भूतात्मने विभूताय भूतोद्भूताय भूतये[५] ॥१४॥
नमः पराय पाराय परमाय परात्मने। परापरप्रतीताय परापरममायिने ॥१५॥
नमः सदसदंशाय हंसरूपाय वै नमः। संसारसाररूपाय सतेऽसते नमो नमः ॥१६॥
सूक्ष्माय समसूक्ष्माय सूक्ष्मातीताय शंसिने[६]। स्थूलाय स्थूलगात्राय स्थूलातीताय वै नमः ॥१७॥
नमो ज्योतिःस्वरूपाय ज्योतिषां पतये नमः। तेजः पुञ्जाय रुद्राय ह्यलक्ष्याय[७] नमो नमः ॥१८॥
ॐ नमो जलस्वरूपाय क्षितिरूपाय वायवे। अग्नये व्योमरूपाय सूर्य्यायाऽब्जाय चात्मने ॥१९॥

स्कन्द उवाच

श्रुत्वा स्तवं महाद्भुतं[८] ब्रह्मणा परिभाषितम्। हर्षोत्फुल्लप्रकाशाङ्गो व्योम्नि देवो महाविभुः ॥२०॥
संसारसाररूपो यः संसारोद्भवकारणम्। प्रचक्रमे वरं दातुं भक्ताय भक्तवत्सलः ॥२१॥

ज्योतीरूपेश्वर उवाच

ब्रह्मन् ! तव मुखाम्भोजसम्भूतवाङ्मयामृतम्। पीत्वा कर्णेन तुष्टोऽहं सर्वलोकोपकारकम् ॥२२॥
य इदं पठति ब्रह्मन् सर्वैनोभिः प्रमुच्यते। असाध्यं साधयेत्सर्वं स्तवराजप्रपाठतः ॥२३॥
इदानीं ते प्रदास्यामि सर्वं वरमनुत्तमम्। त्वत्स्तवानन्दमूढाङ्गो वरं वरय विश्वसृक् ॥२४॥

---

मान्य परमात्मालाई नमस्कार छ, मोक्ष, मङ्गल, अभिमान, हृदय, बुद्धि र चित्तस्वरूप भएका परम परात्मालाई नमस्कार छ। शर्व, भीम, शम्भु र स्थाणुलाई नमस्कार छ। शिव, शितिकण्ठ तथा महात्मा शङ्करलाई नमस्कार छ। वायुस्वरूप ईश्वरलाई नमस्कार छ। पाँच अङ्ग सद्योजात, अघोर, तत्पुरुष, वामदेव र ईशानका रूपमा रहनुहुने अथवा पाँच महाभूतका पाँच गुण (रूप, रस, गन्ध, स्पर्श र शब्द) भएका ईश्वरलाई बारम्बार नमस्कार छ। वामदेव, विश्व र व्योमरूपलाई नमस्कार छ। योग, यज्ञ, यज्ञरूप र योगीलाई नमस्कार छ। योगेश्वर, योग तथा योगाचार्य हजुरलाई नमस्कार छ ॥१३॥ भव, भव्य, भूतपति, भूतात्मा, विभूत, भूतोद्भूत र भूतिलाई नमस्कार छ। पर, पार, परम परात्मा र परापरको रूपमा चिनिनुभएका परापरमय ईश्वरलाई नमस्कार छ ॥१०–१५॥

सत् तथा असत्का अंशलाई नमस्कार छ, हंसरूपलाई नमस्कार छ र संसारका साररूप, सत् तथा असत् स्वरूपलाई बारम्बार नमस्कार छ। सूक्ष्म, समसूक्ष्म र सूक्ष्मदेखि पनि पर रहेका ईश्वरलाई नमस्कार छ। स्थूल, स्थूल शरीर र स्थूलभन्दा पनि पर रहेका ईश्वरलाई नमस्कार छ। ज्योतिस्वरूप तथा ज्योतिका पनि स्वामी परमात्मालाई नमस्कार छ। तेजको पुञ्जका रूपमा विराजमान, जान्न नसकिने अलक्ष्य रुद्रलाई बारम्बार नमस्कार छ। जलस्वरूप, पृथ्वीस्वरूप, वायुस्वरूप, अग्निस्वरूप, आकाशस्वरूप, सूर्यस्वरूप, चन्द्रस्वरूप र आत्मस्वरूपले सुहाउनुभएका ईश्वरलाई नमस्कार छ ॥१६–१९॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! आकाशबाट ब्रह्माजीले गरेको अत्यन्त आश्चर्यदायक स्तुति सुनेर रुद्रले खुसी हुँदै आफ्नो शरीरलाई प्रकाशमा ल्याउनुभयो। संसारको रूप लिएर प्रकट हुने र संसारको उत्पत्तिको कारण मानिनुहुने भक्तवत्सल महाप्रभु ज्योतिस्वरूप रुद्रले भक्तलाई वर दिने विचार गर्दै भन्नुभयो – हे ब्रह्मन् ! तपाईंको मुखरूपी कमलबाट निस्किएको र सबै प्राणीहरूको उपकार गर्ने वाङ्मयस्वरूप अमृत कानले पिएर म प्रसन्न भएको छु। हे ब्रह्मन् ! जसले यो स्तोत्र पढ्छ, त्यो सबै पापबाट मुक्त हुन्छ। यो स्तोत्रराज पाठ गर्नाले मानिसद्वारा असाध्य सबै वस्तु सिद्ध हुन्छन्। हे विश्वका सृष्टिकर्ता ! तपाईंको स्तुतिबाट प्राप्त भएको आनन्दमा स्थिर भएर अब म तपाईंलाई उत्तम वर दिन्छु, वर माग्नुहोस् ॥२०–२४॥

---

५. भूतिने, इति न.सं.पु. पाठः। ६. संशिने, इति न.सं.पु.पाठः। ७. अलक्ष्याय, इति न.सं.पु.पाठः। ८. महद्भद्रम्, इति न.सं.पु.पाठः।

ब्रह्मोवाच

अलक्ष्य सर्वलोकेश तेजोरूप महाविभो। सर्वतेजोमयेशान सर्वभूतानुकम्पक ॥२५॥

यदि तुष्टोऽसि मे नाथ संसारस्थितये सताम्। क्रियतां हि महादेव प्रादुर्भाववरं मयि ॥२६॥

प्रेक्ष्य मे मेदिनीं शून्यां कोटिसमायुताधिकम्। स्रष्टुं चराचरानत्र वाञ्छाम्यहं प्रभोऽधुना ॥२७॥

याचेऽहं त्वां वरं चेति जगत्सर्ज्जनकारणम्। सृज्यमानाँश्च स्रक्ष्यामि जन्तून्भवत्प्रसादतः ॥२८॥

ज्योतीरूप उवाच

सुरश्रेष्ठ हृदा यत्त्वं वदसि तद् भवेत्तथा।[९] सृज्यन्तामात्मना सर्वे अद्यप्रभृति जन्तवः ॥२९॥

विष्णो प्रपालनाय त्वं भविष्यसि च जीविनाम्। चराचरात्मनां शास्ता दुष्टानां पापकर्म्मणाम् ॥३०॥

स्वल्पायुषां भविष्यामि कालरूपस्त्वहं विधे। संहरिष्यामि तान्सर्वान् काले काले हि पापिनः ॥३१॥

स्कन्द उवाच

एवं लब्धवरो धाता सर्वं स्रष्टुं मनो दधे। ईश्वरस्य प्रसादाद्वै प्रादुर्भावाय जीविनाम् ॥३२॥

ततो धाता क्षणं ध्यात्वा तूष्णीमासीत्तमव्ययम्। अण्डं ससर्ज्ज मेदिन्यां रसात्मत्वेन संयुतम्[१०] ॥३३॥

दिव्यवर्षसहस्रं तं धृत्वा योगी कराम्बुजे[११]। अप्रमेयमहाण्डं वै सर्वभूतोद्भवारुणम् ॥३४॥

अलक्ष्यवर्णमाद्यन्तमव्यक्तं समगोचरम्। महाण्डं विश्वसद्हेतु[१२] किञ्चिद्दीर्घं सुवर्त्तुलम् ॥३५॥

---

ब्रह्माजीले भन्नुभयो – हे अलक्ष्य ! हे सबै लोकका स्वामी ! हे तेजोरूप ! हे महाप्रभो ! हे सर्वतेजोमय ! हे ईशान ! हे सबै प्राणीमाथि दया गर्ने ईश्वर ! यदि हजुर मदेखि प्रसन्न हुनुहुन्छ भने संसारमा प्राणीहरूको अस्तित्व कायम गर्नका लागि सुन्दर सृष्टि गर्न सक्ने वर प्रदान गर्नुहोस् । हे प्रभो ! एक करोड पचासलाख वर्षसम्म पृथ्वीमा प्राणीहरूको अस्तित्व न भएको देखेर म यसमा चर तथा अचर वस्तुहरूको सृष्टि गर्न चाहन्छु। म सम्पूर्ण सृष्टिका कारण मानिनुहुने हजुरसित वर चाहन्छु। हजुरको कृपाले संसारमा प्राणीहरूको सृष्टि गर्नेछु ॥२५-२८॥

ज्योतिरूप शिवले भन्नुभयो – पराक्रमशाली हे सुरश्रेष्ठ ब्रह्माजी ! तपाईं जे भन्नुहुन्छ त्यो हुनेछ। आजदेखि तपाईं आफैं विभिन्न प्राणीहरूको सृष्टि गर्न समर्थ हुनुहुन्छ। हे विष्णु ! तपाईं प्राणीहरूको पालनकर्ता हुनुहुनेछ। हे ब्रह्मा! चराचर जगत्‌को शासक भएर थोरै आयु भएका दुष्ट प्राणीहरूलाई समय समयमा कालको रूप लिएर म आफैं संहार गर्नेछु ॥२९-३१॥

कार्तिक स्वामीले भन्नुभयो – यसरी भगवान् शिवजीको अनुग्रहबाट वर प्राप्त गर्नुभएका ब्रह्माजीले प्राणीहरूको सृष्टि गर्ने विचार गर्नुभयो। त्यसपछि ब्रह्माजीले एकछिन ती अविनाशी शिवस्वरूप ज्योतिर्मय पुरुषको ध्यान गर्नुभयो र पृथ्वीको परिकल्पना गरी रसैरसले भरिएको अण्डको सृजना गर्नुभयो। योगी ब्रह्माजीले दिव्य एक हजार वर्षसम्म सबै प्राणीहरूको सृष्टिको मूल कारण मानिएको, नाप्न नसकिने, ठूलो र राता किरणहरूले धप्प बलेको त्यस अण्डलाई स्वयं धारण गर्नुभयो। त्यस अण्डको वर्ण अलक्ष्य थियो, आदि र अन्त्य अव्यक्त थियो, जताततै समथर देखिन्थ्यो, संसारको सृष्टिको कारण भएको यो अण्ड लाम्चो आकारको बाटुलो थियो अर्थात् दीर्घवृत्ताकार थियो ॥३२-३५॥

---

९. सुरश्रेष्ठ यत्त्वं वदसि तत्तथा, इति न.सं.पु.पाठः।

१०. रसात्मना हि संयुतम्, इति न.सं.पु.पाठः।

११. करात्मनौ, इति न.सं.पु.पाठः।

१२. जन्मानम्, इति न.सं.पु.पाठः।

बहुयोजनविस्तारं बहुयोजनवर्तुलम्। धातुर्लोमैकरन्ध्रान्ते[१३] निमग्नं तत्प्रमाणितम् ॥३६॥
स्वकीयं ब्रह्मणो रूपं[१४] तप्तकार्तस्वरप्रभम्। जगदाधारमाद्यन्तं जगद्गर्भनिदानकम् ॥३७॥
ततो युगसहस्रान्ते बिभेदोर्ध्वं मुखं विधिः। सञ्जननाय लोकानां बिभेदाधोमुखं पुनः ॥३८॥
भूयोऽष्टधा विभेदाण्डं सर्वभूतोप कारकः। चकारात्र विभागं तज्जगतः कारणं पुनः ॥३९॥
तच्छिद्रमूर्ध्वमाकाशं धर्मिष्ठानां परा गतिः। स कृतवान् विश्वयोनिः यदधस्ताद्रसातलम् ॥४०॥
पूर्वं बिभेद यच्चाण्डं स्वर्गं सुकृतिनां गृहम्। समन्तादष्टधा योगी छिद्राणि कृतवान् पुनः ॥४१॥
विदिशश्च दिशः सर्वा मनसैव तथा पुनः। ससर्ज्ज सिद्धतोयानि स्वर्णरत्नाकृतानि च ॥४२॥
नानाचित्राणि वर्णानि यानि कानि कलानि च[१५]। बहुवर्णधरा मेघा बभूवुस्तत्प्रसादतः ॥४३॥
यदण्डमध्ये स्कन्नं तद्रसमासीत्समाहितम्। जातरूपं समभवत्तत्सर्वं मेदिनीतले ॥४४॥
तस्य क्लेदार्णवौघेन प्राच्छाद्यत समन्ततः। मेदिनी निखिलागस्त्य सर्वभूतोपकारिणी ॥४५॥
यदण्डमकरोदूर्ध्वं देवलोकचिकीर्षया। तत्र यत्सलिलं क्लिन्नं सोऽभवत्काञ्चनो गिरिः ॥४६॥
तेनाम्भसा प्रमथिता दिशश्चोपदिशश्च हि। अन्तरिक्षं च नाकं च यच्चान्यत् किञ्चिदन्तरम् ॥४७॥
यत्र यत्र जलं स्कन्नं तत्र तत्रोत्थितो गिरिः। बहुशैलघना देवी मेदिनी विषमाऽभवत् ॥४८॥
पर्वतैर्बहुभिस्तोयैः पीडिता मेदिनी मुने। नारायणात्मकं दिव्यतेजोमयं हिरण्मयम् ॥४९॥
धारयितुमशक्तार्णमधस्तात्प्राविशद्रसा। पीड्यमाना जलैः शैलेर्व्यथिता मेदिनी भृशम् ॥५०॥
स्तवं चकार देवस्य[१६] स्वात्मोद्धारार्थमेव च।

---

यो अण्ड धेरै योजनमा फैलिएको र धेरै योजनको बाटुलो थियो। ब्रह्माजीको रौंको एउटा प्वालमा अटाउने यसको प्रमाण थियो। यो अण्ड सुरुदेखि अन्त्यसम्म उजिल्याएको सुवर्णको कान्तिजस्तै तेजिलो, संसारको आधार तथा संसारको उत्पत्तिको कारणका रूपमा रहेको थियो। माथितिर मुख फर्किएका ब्रह्माजीले एक हजार युगपछि संसारको सृष्टि गर्नका लागि तलतिर मुख भएको अण्डलाई फुटाउनुभयो। त्यसपछि सबै प्राणीको हित गर्ने ब्रह्माजीले त्यस अण्डलाई पहिले आठ भाग हुने गरी विभाग गर्नुभयो र जगत्को कारणरूप त्यस अण्डलाई फेरि पनि विभिन्न खण्डमा टुक्र्याउनुभयो ॥३६–३९॥

त्यसरी अण्डलाई अनेक टुक्रामा विभाजन गरेपछि त्यसमा रहेका छिद्रको माथिल्लो भाग धर्मात्मालाई परमगति दिने आकाश भयो। विश्वका रचयिता ब्रह्माजीले त्यस अण्डको तल्लो भागलाई रसातल बनाउनुभयो। पहिले जुन अण्ड फोर्नुभयो त्यो धर्मात्माको वासस्थान स्वर्ग बन्यो। योगी ब्रह्माजीले फेरि त्यसको चारैतिर आठवटा छिद्र पार्नुभयो अनि उहाँले मनैले सबै दिशा, विदिशा, सुन तथा रत्नका आकार भएका सिद्ध जलहरूको सिर्जना गर्नुभयो। त्यसपछि ईश्वरको अनुग्रहबाट चित्रविचित्रका रङ्ग र वर्ण भएका सुन्दर बादलहरू पैदा भए। अण्डको बीचबाट रसाएर जम्मा भएको जुन रस थियो त्यो सबै रस पृथ्वीमा सुनको रूपमा परिणत भयो। हे अगस्त्य ! त्यसको लेदो नै समुद्रको भेल बन्यो र त्यसले पृथ्वीलाई चारैतिर ढाक्यो। त्यसपछि पृथ्वी सबै प्राणीहरूको उपकारक आधार बनिन् ॥४०–४५॥

देवलोक बनाउने इच्छाले ब्रह्माजीले अण्डको जुन माथिल्लो भाग बनाउनुभएको थियो, त्यही माथिल्लो भागबाट पग्लिएको रसले सुमेरु पर्वत बन्यो। त्यस रस अथवा जलले सम्पूर्ण दिशा, विदिशा, अन्तरिक्ष, आकाश र तिनीहरूको अन्तरलाई पनि ढाक्यो। पृथ्वीमा जहाँ–जहाँ जलले ढाक्यो, त्यहाँ–त्यहाँ पर्वतहरू बने। यसरी धेरै पर्वतकी धनी भएकी पृथ्वी असमान धरातलकी अर्थात् विषम रूपकी बनिन् ॥४६–४८॥

हे अगस्त्य मुनि ! धेरै पर्वत र पानीले पीडित भएकी पृथ्वी दिव्य तेजोमय, हिरण्मय र नारायणात्मा जलराशि धारण गर्न नसकेर तल समुद्रमा डुब्न पुगिन्। यसप्रकार पानीद्वारा पीडित बनेकी र पर्वतद्वारा सताइएकी पृथ्वीले आफ्नो उद्धारका लागि नारायणको स्तुति गर्न लागिन् ॥४९–५०॥

---

१३. रंध्रे तम्, इति न.सं.पु.पाठः। १४. मूर्तिम्, इति न.सं.पु.पाठः। १५. कला(रा)नितत्, इति न.सं.पु.पाठः।

मेदिन्युवाच

नमोऽच्युताय देवाय वैकुण्ठाय च विष्णवे ॥५१॥
व्यक्ताय व्यक्तरूपाय व्यक्ताव्यक्तविभूतये। विष्वक्सेनाय कृष्णाय चतुर्भुजाय शार्ङ्गिणे ॥५२॥
नारायणाय कालाय नाराखद्वोपशायिने। पुण्डरीकसुनेत्राय[१७] दैत्यारये सुपर्वणे ॥५३॥
अधोक्षजाय देवाय श्रीपतये नमो नमः। विश्वाय विश्वरूपाय बहुरूपाय रूपिणे ॥५४॥
एकरूपविरूपाय ह्यरूपाय नमो नमः। एकवक्त्रद्विजिह्वाय बहुवक्त्राय ते नमः ॥५५॥
एकजिह्वद्विजिह्वाय द्विजिह्वशायिने नमः। भवोद्भूतकदेहाय भवरूपाय वै नमः ॥५६॥
प्रविभवाय भूतानां हरये भूतिभूतये। अनन्तायाप्रमेयाय मायिने ते ह्यमायिने ॥५७॥
नित्यायानित्यरूपाय महानन्दाय नमो नमः। नारोद्भवाय नाराय नाराधाराय नन्दिने ॥५८॥
नारोद्भवोद्भवाच्र्याय नायकाय नमो नमः। निरञ्जनाय शान्ताय निर्विकल्पाय सूचिने ॥५९॥
अखण्डाय निरोधाय सदानन्दाय शश्वते[१८]। मत्स्यरूपाय कूर्म्माय वराहाय नृसिंहिने ॥६०॥
वामनाय त्रिरामाय नमो बुद्धाय कल्किने।

स्कन्द उवाच

इत्येवं स्तवमाकर्ण्य कर्णपेयं सुखावहम् ॥६१॥
विष्णुस्तुतोष तेजस्वी स मेदिन्यै घटोद्भव। स्तवैः सन्तोषितो देवः पूर्णानन्दस्तदा विभुः ॥६२॥
तस्यै वाञ्छावरं दातुमाविर्भूतो महाबलः।

विष्णुरुवाच

वरं वरय कल्याणि लोकानुग्रहकारकम् ॥६३॥ अद्य दास्यामि वाञ्छार्थं यत्ते मनसि विद्यते ॥

---

पृथिवीले भगवान्को स्तुति गर्दै भनिन्- हे प्रभो ! म अच्युत, वैकुण्ठ, विष्णु, व्यक्त, व्यक्तरूप, व्यक्ता-व्यक्तविभूति, विष्वक्सेन, चतुर्भुज, नारायण, कालस्वरूप, पानीमा शयन गर्ने, कमलपत्रजस्ता आँखा भएका, दैत्यशत्रु, राम्रा अङ्ग भएका, इन्द्रियजयी, वेदस्वरूप एवं लक्ष्मीका पति नारायणलाई बारम्बार नमस्कार गर्छु। विश्व, विश्वरूप, अनेकरूप, रूपधारी, एकरूप लिने, विकृत रूप लिने र सुन्दर रूप पनि लिने ईश्वरलाई नमस्कार छ। यस्तै एक मुख,दुई मुख र अनेक मुख भएका नारायणलाई नमस्कार छ ॥५१-५५॥

एउटा जिब्रो भएका, दुईवटा जिब्रो भएका र दुई जिब्रा भएका शेषमा शयनगर्ने ईश्वरलाई नमस्कार छ। संसारको सृष्टिका लागि शरीर धारण गर्ने र संसारकै रूप लिने ईश्वरलाई नमस्कार छ। प्राणीहरूका निमित्त कल्याणकारी सांसारिक समृद्धिलाई अलङ्कारका रूपमा धारण गर्नुहुने, अनन्त, अप्रमेय, मायालाई धारण गरेर पनि मायाबाट टाढै रहनुभएका, नित्य, अनित्य र आनन्दस्वरूपले सुहाउनुभएका ईश्वरलाई बारम्बार नमस्कार छ। पानीको सृष्टि गर्नुहुने, पानीकै रूप लिनुहुने र पानीका आधार हुनुभएका परमात्मालाई प्रणाम गर्दछु। फेरि कमलमा उत्पन्न ब्रह्माजीद्वारा पनि पूजित नन्दीस्वरूप नायकलाई नमस्कार गर्दछु। निरञ्जन, शान्त, निर्विकल्प, सियोझैं सर्वत्र प्रवेश गर्ने, अखण्ड, निरोधस्वरूप, सदा आनन्द र चिरस्थायी रहने, मत्स्य, कूर्म, वराह, नृसिंह, वामन, तीन राम अर्थात् राम, परशुराम र बलराम, बुद्ध र कल्कि अवतार लिनुहुने ईश्वरलाई नमस्कार गर्दछु ॥५६-६०½॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! तेजस्वी विष्णु पृथ्वीको कर्णप्रिय यस्तो स्तुति सुनेर सन्तुष्ट हुनुभयो। पृथिवीले गरेको स्तुतिबाट सन्तुष्ट भई पूर्ण आनन्दित बन्नुभएका सर्वव्यापक महापराक्रमी भगवान् विष्णु पृथ्वीलाई इच्छा अनुसारको वर प्रदान गर्नका लागि प्रकट हुनुभयो ॥६१-६२½॥

विष्णुले भन्नुभयो – हे कल्याणी ! तिम्रो मनमा जस्तो इच्छा लागेको छ, त्यस्तो वर माग। तिम्रो हृदयमा रहेका सम्पूर्ण अभिलाष पूर्ण गर्ने वर आज म तिमीलाई दिन्छु ॥६३॥

---

१६. देवाय, इति न.सं.पु.पाठः। १७. पुण्डरीपत्रनेत्राय, इति न.सं.पु.पाठः। १८. सदानन्दाय शाश्वते, इति न.सं.पु.पाठः।

मेदिन्युवाच

यदि ददासि मे पूर्वं वरमाव्रियतां प्रभो ॥६४॥

ततश्चराचरं सर्वं धार्य्यति भवता सह। विना तव वरं धृत्वा[१९] पीडिताहं न संशयः ॥६५॥

शक्ता तवौजसा युक्ता चराचरैर्गरीयसी। दातव्यमिति मे देव पतित्वं च वरोत्तमम् ॥६६॥

भूयः स्तवस्य मे नाथ फलं फलय साम्प्रतम्।

विष्णुरुवाच

एवमस्तु धरे देवि यत्त्वं वाञ्छसि तत्तथा ॥६७॥

मा काले म्रियतां मर्त्यो माभिभूयात्पराभवैः। पुत्रवान् शक्तिमान् भूयान्न पापैर्लिप्यते तथा ॥६८॥

शत्रवो विलयं यान्तु मेदिनीस्तुतिपाठतः।

स्कन्द उवाच

एवं तस्यै वरं दत्त्वा मेदिन्यै स महाविभुः ॥६९॥

छन्दोभिरक्षरैर्म्मन्त्रैः श्रुतिभिः समलङ्कृताम्। वाराहीं तनुमास्थाय सर्वयज्ञमयीं विभुः ॥७०॥

दंष्ट्रया गां समुद्रस्थामुज्जहार महाबलः। समुद्रैर्गिरिभिर्युक्तामद्यापि सचराचराम् ॥७१॥

दंष्ट्रायां धारयामास वराहो मेदिनीं मुने।

अगस्त्य उवाच

यज्ञरूपो वराहोऽसौ त्वयोक्तो मे चमूपते ॥७२॥ प्रमाणं वपुषस्तस्य को वर्णो[२०] वद मेऽधुना ॥

पृथ्वीले भनिन्- हे भगवन् ! यदि हजुर मलाई वर दिन चाहनुहुन्छ भने पहिले मलाई यहाँबाट उठाउनुहोस्। त्यसपछि हजुरको साथमा म यो सम्पूर्ण चराचर जगत्लाई धारण गर्नेछु। म पीडित भएकी छु। हजुरको अनुग्रहविना म यो चराचर जगत्लाई धारण गर्न सक्तिनँ। हे नाथ ! हजुरको शक्तिले युक्त हुन पाएँ भने म गरुङ्गी भएर चराचर जगत्लाई धारण गर्नेछु। यदि मलाई वर दिनुहुन्छ भने हजुर मेरा पति बनिदिनुहोस्। फेरि यस स्तुतिको महत्त्व र फल पनि अहिले प्रकाशित गरिदिनुहोस् ॥६४-६६॥

विष्णुले भन्नुभयो - हे पृथ्वी ! हे देवी ! तिमी जे चाहन्छ्यौ त्यो हुन्छ। जसले तिमीले गरेको यो स्तुति पाठ गर्नेछ त्यस मानिसले अकालमा मर्नुपर्ने छैन। उसले कसैबाट पराजित एवं तिरस्कृत हुनुपर्ने छैन, त्यो व्यक्ति पुत्रवान् तथा शक्तिसम्पन्न हुनेछ र त्यसलाई कुनै पनि पापले स्पर्श गर्नेछैनन्। पृथिवीले गरेको स्तुतिको पाठका प्रभावले उसका सबै शत्रुहरू समाप्त हुनेछन् ॥६७-६८॥

कार्तिक स्वामीले भन्नुभयो - हे अगस्त्य मुनि ! यसरी ती पृथ्वीलाई वर दिएपछि महापराक्रमी, महाप्रभु भगवान् विष्णुले छन्दोमय (मन्त्रमय) अक्षरले युक्त, वेदले सिँगारिएको र सम्पूर्ण यज्ञले सम्पन्न भएको वराहको शरीर धारण गर्नुभयो ॥६९-७०॥

त्यसपछि महापराक्रमी वराहरूपधारी भगवान् विष्णुले समुद्रभित्र डुबेको अवस्थामा रहेकी पृथ्वीलाई आफ्ना बलिया दाह्राद्वारा माथि उठाउनुभयो र समुद्र, पहाड र चराचर जगत्ले युक्त भएकी अत्यन्त गह्रौंगी पृथिवीलाई पनि उहाँले आफ्ना दाह्रामा धारण गर्नुभयो ॥६९-७१½॥

अगस्त्य मुनिले भन्नुभयो - हे सेनानी कार्तिकेय ! हजुरले वराह भगवान् यज्ञस्वरूप हुनुहुन्छ भनेर बताउनुभयो। त्यस्ता यज्ञमूर्ति वराहको शरीरको प्रमाण कति छ ? उहाँको वर्ण कस्तो छ ? त्यो कुरा पनि अहिले मलाई बताउनुहोस् ॥७२½॥

१९. धार्यम्, इति न.सं.पु.पाठः। २०. किं वर्णम्, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

रूपं दधार वाराहं सर्वदैत्यभयावहम् ॥७३॥
तिस्रः कोट्यर्द्धकोटीनां लोमतीर्थैः पवित्रकम् । कोटियोजनविस्तारं तद्द्विगुणं समुच्छ्रितम् ॥७४॥
वाराहोऽसौ महाकायो दिव्यरूपः श्रुतिस्तुतः । नीलजीमूतसङ्काशः क्षयगर्ज्जितनिस्वनः ॥७५॥
श्वेतदीप्तोग्रदंष्ट्री च शैलसङ्काशविग्रहः । विद्युदग्निप्रकाशाक्ष आदित्याभाससम्प्रभः ॥७६॥
पीनवृत्तायतस्कन्धस्त्वष्टशार्दूलविक्रमः । पीनोन्नतकटिस्थानो[२०] वृषलक्षणचिह्नितः ॥७७॥
वेदरावो यूपदंष्ट्रः क्रतुहस्तश्चितीमुखः । अग्निजिह्वो दर्भरोमा ब्रह्मशीर्षो महातपाः ॥७८॥
अहोरात्रेक्षणः शश्वद्वेदाङ्गश्रुतिभूषणः । आज्यनासः स्रुवस्तुण्डः सामघोषस्वरो महान् ॥७९॥
सत्यधर्ममयः साक्षात्सत्यविक्रमसत्कृतः । छायाशक्तिर्म्महायोगी स्वर्णशैल इवोच्छ्रितः ॥८०॥
एवमास्थाय वाराहीं[२१] तनुं यज्ञमयीं विभुः । समुद्धर्त्तुं रसां गुर्वीं प्रविवेश रसातलम् ॥८१॥
अद्भिः सञ्छादितामूर्वीं रसातलतले गताम् । दंष्ट्रयां गां समुद्रस्थामुज्जहार महाबलः ॥८२॥
समुद्रैर्गिरिभिर्युक्तामद्यापि सचराचराम्[२२] । दंष्ट्रायां धारयामास लोकहिताय विश्वजित् ॥८३॥
पृथिवीप्रविभागाय मनश्चक्रे महाविभुः । आज्ञापयत्तदागस्त्य ब्रह्माणं सर्वजन्मने ॥८४॥

तस्यां विधाता सकलांश्च जन्तून्, पञ्चात्मकैर्विप्र ससर्ज्ज नित्यम् ।
लक्षाणि जानीहि बहूनि तानि मायाप्रसक्तानि भृशं बभूवुः ॥८५॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे मेदिन्युद्धरणन्नाम द्वितीयोऽध्यायः ॥२॥

---

कार्तिक स्वामीले भन्नुभयो – भगवान् विष्णुले सम्पूर्ण दैत्यमा त्रास उत्पन्न गर्ने वराहको रूप धारण गर्नुभयो । साढे तीन करोड तीर्थमय रौंले पवित्र भएको वराह भगवान्को यो रूप एक करोड योजन चौडाइ र चार करोड योजन उँचाइको थियो । वेदहरूद्वारा स्तुति गरिएका विशालकाय एवं दिव्य रूपधारी कालो मेघजस्तो वर्ण भएका वराहको ध्वनि प्रलयका समयमा गर्जने बादलको गर्जनसमान थियो । सेता, चम्किला र डरलाग्दा दाह्रा भएका भगवान् वराहको शरीर पहाडजस्तै कठोर थियो । उहाँका आँखा बिजुलीको ज्योतिजस्तै तेजिला थिए भने शरीरको कान्ति सूर्यको तेजजस्तै थियो । उहाँका मोटा, बाटुला र फैलिएका काँध थिए । उहाँ बाघजस्तै पराक्रमी हुनुहुन्थ्यो, वराहको पुरुषको चिह्नले अङ्कित अग्लो कटिभाग थियो । महातपस्वी वराहले वेदरूप शब्द, यज्ञस्तम्भरूप दाह्रा, यज्ञरूप होता, अश्विनीरूप मुख, अग्निरूप जिब्रो, कुशरूप रौं र ब्रह्मरूप शिर धारण गर्नुभएको थियो ॥७३–७८॥

दिन र रात उहाँका आँखा थिए, वेदका अङ्गहरू निरन्तर उहाँको कानका गहना बनेका थिए । आज्य (हवन गर्ने घिउ) उहाँको नाक थियो, उहाँको थुतुनो सुरोका रूपमा थियो । सामवेदको शब्द ठूलो घुर्घुराहट थियो । छायामा शक्ति भएका, सुमेरु पर्वतजस्तै फैलिएका महायोगी वराह सत्यधर्मले अलङ्कृत हुनुहुन्थ्यो र सत्यधर्मले युक्त भएका व्यक्तिबाट सम्मानित हुनुहुन्थ्यो । वराहको आकार भएको यस्तो यज्ञमय शरीर धारण गरेर भगवान् विष्णु गह्रौंगी पृथ्वीलाई उठाउन रसातलमा प्रवेश गर्नुभयो ॥७९–८१॥

रसातलमा पुगेपछि पानीले छोपिएर समुद्रमा डुबेकी पृथ्वीलाई महापराक्रमी वराहले दाह्राले उठाउनुभयो। समुद्र, पहाड र चराचर जगत्ले जेलिएकी पृथ्वीलाई लोकको कल्याणका लागि आज पनि विश्वविजयी भगवान् वराहले दाह्रामा धारण गर्नुभएको छ। हे अगस्त्य मुनि ! महाप्रभु वराह भगवान्ले पृथ्वीलाई विभिन्न भागमा विभाजन गर्ने विचार गर्नुभयो। त्यसपछि उहाँले ब्रह्माजीलाई सृष्टि गर्ने आदेश दिनुभयो। हे विप्र अगस्त्य ! त्यस पृथ्वीमा ब्रह्माजीले पृथ्वी, जल, तेज, वायु र आकाश पाँच तत्वको उपयोग गरी निरन्तर सृष्टि गर्न थाल्नुभयो। गहिरो मायामा डुबेका ती प्राणीहरूको सङ्ख्या वृद्धि हुँदै जाँदा लाखौंको सीमा नाघ्यो ॥८२–८५॥

स्कन्दपुराणअन्तर्गत हिमवत्खण्डको मेदिनीको उद्धारनामक द्वितीय अध्यायको नेपाली अनुवाद परिपूर्ण भयो ।

---

२१. स्थानम्, इति न.सं.पु.पाठः । २२. एवं वाराहमास्थाय, इति न.सं.पु.पाठः । २३. सचराचरम्, इति न.सं.पु.पाठः ।

# तृतीयोऽध्यायः

## द्वीपपर्वतसागरादिरचना

स्कन्द उवाच

तस्यां धाता घटोद्भूत सप्तद्वीपानकल्पयत्। जम्बूद्वीपं ततः प्लक्षं शाल्मलीकं कुशं तथा ॥१॥
क्रौञ्चद्वीपं पुनः शाकं पुष्करमसृजत्प्रभुः। जम्बूद्वीपं ततो मध्ये तेषां क्रमात् समसृजत् ॥२॥
पञ्चाशत्कोटिविस्तारं योजनानां नवान्तरम्। जम्बूद्वीपप्रमाणञ्च भूयस्तेषां वदामि ते ॥३॥
क्षारोदं द्विगुणं ज्ञेयं जम्बूद्वीपस्य कुम्भज। क्षारस्य द्विगुणं प्लक्षं प्लक्षस्य द्विगुणं तथा ॥४॥
इक्षु तद्द्विगुणं चाऽन्यं शाल्मलीद्विगुणं तथा। शाल्मल्याश्च सुरोदं वै सुरोदाद् द्विगुणं कुशम् ॥५॥
कुशस्य द्विगुणं श्रेष्ठं घृतं तद्द्विगुणं मुने। क्रौचं तद्द्विगुणं ज्ञेयं दधि तद्द्विगुणं तथा ॥६॥
शाकं शाकस्य च क्षीरं द्विगुणं तस्य पुष्करम्। सर्वद्वीपसमुद्राणां द्विगुणाद् द्विगुणोत्तरम् ॥७॥
प्रमाणं विस्तरं ज्ञेयं सप्तद्वीपं सरित्पतिम्। द्वीपानां मध्यतोऽगस्त्य जम्बूद्वीपं विराजते ॥८॥
जम्बूद्वीपान्तरे मध्ये चतुरस्रे सुशोभनम्। मेरुं चकार विश्वात्मा सर्वशैलोत्तमोत्तमम् ॥९॥
जाम्बूनदमयं शैलं सर्वतेजोमयं परम्। अयुतार्कप्रतीकाशं ज्योतीरूपमहर्निशम् ॥१०॥
योजनं चतुरशीतिलक्षाणां सङ्ख्यया मुने। मेरोस्तुङ्गश्च विस्तारो ह्यधश्च[1] तादृशस्तथा ॥११॥

---

अध्याय- ३

हिमालय आदि पर्वतहरूको रचना

कार्तिकस्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! त्यसपछि ब्रह्माजीले जम्बूद्वीप, प्लक्षद्वीप, कुशद्वीप, क्रौञ्चद्वीप र शाकद्वीप गरी सात द्वीपको सिर्जना गर्नुभयो। ती मध्ये जम्बूद्वीपलाई माझमा राखेर क्रमशः अरू द्वीपहरूको व्यवस्थापन गर्नुभयो ॥१-२॥

जम्बूद्वीपको प्रमाण पचास कोटि योजन चौडाइ र नौ योजन उचाइ छ। अब अरू द्वीपका बारेमा म तपाईंलाई बताउँछु, सुन्नुहोस्। हे अगस्त्य मुनि ! जम्बूद्वीपभन्दा दुईगुणा बढी फैलावट भएको क्षारोद समुद्र छ। त्यसको दुई गुणा ठूलो प्लक्षद्वीप छ। प्लक्षद्वीपको दुईगुणा इक्षुसागर, इक्षुसागरको दुईगुणा शाल्मलीद्वीप, शाल्मलीद्वीपको दुईगुणा अमृतसागर र अमृतसागरको दुईगुणा कुशद्वीप रहेको छ। यस्तै कुशद्वीपको दुई गुणा घृतसागर, त्यसको दुईगुणा क्रौञ्चद्वीप छ भने त्यसको दुईगुणा दधिसमुद्र छ भन्ने बुझ्नुहोस्। यसैगरी दधिसमुद्रको दुईगुणा शाकद्वीप, त्यसको दुईगुणा क्षीरसमुद्र र त्यसको पनि दुईगुणा पुष्करद्वीप छ। सबै द्वीप र समुद्रको प्रमाण उत्तरोत्तर दुईगुणाले बढी रहेको छ। हे अगस्त्य मुनि ! यसरी सात द्वीप र समुद्रको विस्तारका बारेमा बुझ्नुपर्छ। ॥३-८॥

ती सबै द्वीपहरूको माझमा जम्बूद्वीप सुशोभित भएर रहेको छ। त्यही चारैतिर फैलिएको सुन्दर जम्बूद्वीपको माझमा रहने गरी ब्रह्माजीले सबै पर्वतहरूमा अत्युत्तम सुमेरु पर्वतको सिर्जना गर्नुभयो। सुन्दर यो पर्वत सुवर्णमय र सम्पूर्ण तेजले भरिभराउ छ। दश हजार सूर्यको कान्तिसमान कान्तियुक्त यो पर्वत रातदिन ज्योतिरूपले प्रकाशमान छ । सुमेरु पर्वतको शिखर चौरासीलाख योजनमा फैलिएको छ र यसको फेद पनि त्यत्ति नै योजन फैलिएको छ ॥९-११॥

---

१. विस्तारमधश्च, इति न.सं.पु.पाठः।

षोडशानां च लक्षाणां योजनानां च संख्यया। चतुःशृङ्गः सुविस्तारो मेरुर्य्येन पृथक्कृतः[२] ॥१२॥
विदिक्षु तादृशं धात्रा कृतं सानु पुनः पृथक्। योजनं पञ्चलक्षाणां प्रमाणेन सुविस्तृतम् ॥१३॥
प्राच्यं शृङ्गञ्च सौवर्णमवाच्यं शृङ्गमायसम्। प्रातीच्यं राजतं शृङ्गमुदीच्यं ताम्रकं तथा ॥१४॥
प्रवालमयमेकं च शृङ्गं रत्नमयं तथा। सौवर्णस्फाटिकं धाता तद्विदिक्षु चकार वै ॥१५॥
प्राच्ये स्थानं महेन्द्रस्य ह्यवाच्ये शमनस्य च। प्रतीच्ये वारुणं ज्ञेयमुदीच्ये धनदस्य च ॥१६॥
वह्निकर्बूरवायूनां देवानां हि यथाक्रमात्। स्थानं विदिक्षु जानीयात्कुम्भयोने स्वकं स्वकम् ॥१७॥
कोटिशृङ्गैः समायुक्तं गङ्गापातैर्महोज्ज्वलः। चतुर्दश दधानश्च भुवनं तत्[३] सुरालयः ॥१८॥
जाम्बूनदमयैः शृङ्गैः सहस्रैरभिराजितः[४]। इन्द्रनीलमयैः शृङ्गैर्वैदूर्य्यमयकोटिभिः ॥१९॥
मारकतमयोद्भूतैश्चन्द्रकान्तिमयोद्भवैः। सूर्यकान्तिमयग्रावै रौप्यकान्तिमयैस्तथा ॥२०॥
पुष्परागमयैर्दिव्यैर्नीलाञ्जनमयोद्भवैः। स्फाटिकैर्मणिभिर्दिव्यैः शेखरैरुपशोभितः ॥२१॥
पञ्चरत्नमयैः शृङ्गैर्बहुरत्नमयैः क्वचित्। नानौषधिसुतेजोभिस्तेजोमयसमुद्भवैः ॥२२॥
मौक्तिकोद्भवसंयुक्तैः प्रवालाङ्कुरसम्भवैः। श्रीमद्वज्रसमुद्भूतैः सर्वरत्नमयोज्ज्वलैः ॥२३॥
सहस्रसानुभिर्युक्तो नानारत्नप्रकुट्टिमैः। सिद्धरससमुत्कीर्णैर्हिरण्यवृक्षसंयुतैः ॥२४॥
हिरण्यवेत्रसंयुक्तैर्हिरण्यपद्मसम्भवैः। चिन्तामणिद्रुमोद्भूतैर्हिरण्यकुसुमोज्ज्वलैः ॥२५॥

---

त्यसपछि ब्रह्माजीले सुमेरु पर्वतमा बाइलाख योजन फैलिएका छुट्टा–छुट्टै चारवटा टाकुरा बनाउनुभयो। यी टाकुराको निर्माणसँगै ब्रह्माजीले सुमेरु पर्वतका विदिशामा पनि पाँचलाख योजनमा फैलिएका त्यस्तै छुट्टा–छुट्टै टाकुराहरूको सृजना गर्नुभयो। उहाँले पूर्वमा सुनको, दक्षिणतिर फलामको, पश्चिममा चाँदीको र उत्तरमा तामाको टाकुराको निर्माण गर्नुभयो। यसै गरी ब्रह्माजीले विदिशामा क्रमैले मुगा, रत्न, सुन र स्फटिकमणिका टाकुराहरूको पनि निर्माण गर्नुभयो ॥१२–१५॥

हे अगस्त्य मुनि ! यी टाकुराहरूमध्ये पूर्वमा इन्द्रको, दक्षिणमा यमराजको, पश्चिममा वरुणको र उत्तरमा कुबेरको वासस्थान बन्यो। यसरी नै विदिशामा पनि क्रमशः अग्नि, निर्ऋति, वायु र ईशानका आ–आफ्ना आवास बने भन्ने कुरा तपाईं बुझ्नुहोस्। करोडौं चुचुरा र गङ्गाको धाराले अत्यन्त उज्वल देखिने यस सुमेरु पर्वतले स्वर्ग तथा चौधै भुवनलाई धारण गरेको छ ॥१६–१८॥

हजारौं सुवर्णमय शिखर तथा इन्द्रनीलमणि र वैदूर्यमणिले बनेका शिखरहरूले युक्त यो सुमेरु पर्वत अत्यन्त सुशोभित छ। आश्चर्यजनक मरकतमणि, चन्द्रकान्तमणि, सूर्यकान्तिमणि, चाँदी, पुष्पराज, नीलमणि र स्फटिकमणिबाट बनेका दिव्य शिखरहरूले गर्दा झन् यो पर्वत अत्यन्त सुहाएको छ ॥१९–२१॥

सुमेरु पर्वतमा पञ्चरत्नले बनेका शिखर छन् भने कतै अनेक रत्नले बनेका शिखरहरू रहेका छन्। अनेक किसिमका औषधिका तेजले गर्दा तेजोमय भएर, मोती, मुगा र वज्रमणिको ज्योति मिसिनाले सर्वरत्नज्योतिर्मय भएको हुँदा उज्यालो देखिने हजार टाकुराले यो पर्वत सम्पन्न भएको छ। सिद्धरसले खचित सुनका वृक्ष, सुनका लहरा, सुनका कमल र चिन्तामणि वृक्षका सुनौला फूलले गर्दा अत्यन्त उज्ज्वल शिखर, सुवर्णमय पुष्पहरूले यो पर्वत अत्यन्त विभूषित भएको छ ॥२२–२५॥

---

१. विस्तारमधश्च, इति न.सं.पु.पाठः।
२. चतुःशृङ्गं सुविस्तारं मेरोर्येन पृथक्कृतम्, इति न.सं.पु.पाठः।
३. भुवनन्तम्, इति न.सं.पु.पाठः।
४. सहस्रेराजितं परम्, इति न.सं.पु.पाठः।

काञ्चनीभिः शिलाभिश्च गुहाभिश्च विभूषितः । नानापुष्पयुतैः कुञ्जैः सर्वकालफलैर्द्रुमैः ॥२६॥
जाम्बूनदमयैर्गेहैर्विविधरत्नभूषितैः । हिरण्याच्छादितैः शुभ्रैः सवज्रकलशैर्युतैः ॥२७॥
वापीभिरमृतोत्पन्नप्रणालीभिः सुशान्तिदः । बहुचित्रध्वजैश्चैव पताकायष्टिशोभनैः[५] ॥२८॥
गङ्गापातैश्चतुर्भिश्च चतुर्दिग्भ्यः सुनिर्झरैः । विराजते हि शैलेन्द्रः कूटोद्भूतैः सुनिर्म्मलैः ॥२९॥
प्राचीकूटोद्भवेनाशु जवात् प्रपतनेन वै[६] । रक्ताभेन जलेनार्य्य ध्वजेनेव सुपूजितः[७] ॥३०॥
याम्यकूटोद्भवेनाशु वेगप्रपततेन वै । अञ्जनाभेन तोयेन ध्वजेनेव मनोहरः[८]॥३१॥
प्रतीचीकूटसम्भूतनिर्झरेण सुवेगिना । रौप्याभेन जलेनैव ध्वजेनेव सुशोभितः[९] ॥३२॥
उदीचीकूटसम्भूतनिर्झरेण सुवेगिना । हिरण्याभजलेनैव ध्वजेनेव मनोहरः[१०] ॥३३॥
कोटिभिर्ज्जलधाराभिर्निर्झरैर्जलपातिभिः । राजितो गिरिराजेन्द्रो सर्वतेजोभिसारकः ॥३४॥
जाम्बूनदजया नद्या प्राग्वर्त्तिन्या महोदयः[११] । अव्ययायाश्चतुर्दिक्षु[१२] तदधो हि सुसंवृतः[१३] ॥३५॥
तत्प्रान्तरेऽचलैश्चाऽन्यैः सर्वधातुमयैर्वृतः । इत्येवं कथितोऽगस्त्य सर्वदेवाश्रयो गिरिः ॥३६॥
भूयोऽहं ते प्रवक्ष्यामि शृणुष्वेकाग्रमानसः । ततः प्राचीं दिशं गत्वा चकारोदयपर्वतम् ॥३७॥
लक्षयोजनविस्तारं तदर्द्धं च समुच्छ्रितम् । ऋषभं नाम तं ब्रह्मा प्रथितं भुवि दुर्लभम् ॥३८॥
हेमरजतवृक्षाढ्यं पुष्परत्नोपशोशितम् । शतयोजनविस्तारं शतयोजनमुच्छ्रितम् ॥३९॥
जातरूपमयैः शृङ्गै राजितं सानुभिर्भृशम् । भूयश्चकार धाताऽसौ बहुरत्नोपलैर्मुने ॥४०॥

---

सुवर्णमय शिला र गुफाहरूले सुहाएको, विभिन्न फूल, कुञ्ज, सबै कालमा फल फल्ने वृक्षहरूले युक्त तथा सुनले ढाकिएका, सुन्दर वज्रकलशले युक्त भएका र विभिन्न रत्नले सिँगारिएका सुवर्णमय घरहरूले युक्त, अमृतका तलाऊ, सुन्दर खोल्साखोल्सीहरू, अत्यन्त विचित्र ध्वजापताका र ध्वजदण्ड, गङ्गाको प्रवाह र शिखरबाट निस्किएर चारैदिशामा खसेका निर्मल झरनाहरूले सुमेरु पर्वत अत्यन्त शोभायमान छ ॥२६–२९॥

हे मुनि ! पूर्वपट्टिको शिखरबाट पैदा भएर अत्यन्त तीव्र गतिले खस्ने रातो वर्णको पानीको झरना रातो पताकाजस्तै सुहाएको छ। दक्षिण टुकुराबाट अत्यन्त वेगसित खसेको गाजले रङ्गको पानी भएको झरना सुन्दर कालो पताकाजस्तो देखिन्छ। पश्चिम शिखरबाट अत्यन्त वेगसित झरेका, चाँदीको जस्तो वर्ण भएको जलयुक्त झरना सेतो ध्वजाजस्तै सुशोभित देखिन्छ। उत्तरपट्टिको शिखरबाट अत्यन्त वेगसित निस्किएको झरना सुनौलो पानी भएको हुँदा सुनको पताकाजस्तै सुन्दर बनेको छ। करोडौं पानीका धारा र प्रशस्त पानी भएका झरनाले गर्दा सुमेरु पर्वत सबै किसिमका तेजहरू फैलाउँदै शोभायमान भएको छ। पानी कहिल्यै नसुक्ने र ठूला–ठूला भुमरी पर्ने, सुवर्णमय नदीहरूले सुमेरु पर्वतको तल्लो भाग चारै दिशाबाट ढाकिएको छ ॥३०–३५॥

हे अगस्त्य मुनि ! त्यस पर्वतको प्रान्त भागलाई सर्वधातुमय अरू पर्वतहरूले ढाकेका छन्। यसरी सम्पूर्ण देवताहरूको वासस्थान भएको यस पर्वतको वर्णन मैले गरेँ। अब फेरि म तपाईंलाई अरू कुरा बताउँछु, एकाग्र चित्त भएर सुन्नुहोस्। हे अगस्त्य मुनि ! त्यसपछि ब्रह्माजीले पूर्वदिशामा गएर उदयाचल पर्वत बनाउनुभयो। पृथ्वीमा सबैभन्दा दुर्लभ ऋषभ नाम गरेको यो पर्वत एकलाख पचास हजार योजन फैलिएको छ। त्यसपछि सुवर्णमय तथा रजतमय वृक्षहरूले सुहाएको, सय योजनको चौडाइ र सय योजन उचाइ भएको, सुवर्णमय शिखरहरूले गर्दा अत्यन्त सुशोभित, अनेक रत्नमय शिलाहरूद्वारा ब्रह्माजीले फेरि महेन्द्र पर्वतको सृजना गर्नुभयो ॥३६–४०॥

---

५. वापीभिरमृतोत्पन्नैः प्रणालीभिः सुशोभनैः । बहुचित्रध्वजाभिश्च पताकायष्टिशोभनैः ॥, इति न.सं.पु.पाठः ।
६. जवप्रपतनेन च, इति न.सं.पु.पाठः ।
७. पताकयेव पूजितम्, इति न.सं.पु.पाठः ।
८. पताकयेव सुन्दरम्, इति न.सं.पु.पाठः ।
९. पताकयेव शोभितम्, इति न.सं.पु.पाठः ।
१०. पताकयेव सुन्दरम्, इति न.सं.पु.पाठः ।
११. आवर्त्तिन्या महोदयाम्, इति न.सं.पु.पाठः ।
१२. अनव्ययाश्चतुर्दिक्षु, इति न.सं.पु.पाठः ।
१३. सुसंवृतम्, इति न.सं.पु.पाठः ।

महेन्द्रमथ शैलेन्द्रं शतयोजनमुच्छ्रितम्। जातरूपमयैः शृङ्गैर्बालकादित्यसन्निभैः ॥४१॥
राजितं तं महाशैलं सर्वधातुविभूषितम्। सर्वद्रुमलतोपेतं सर्वपुष्पोपशोभितम् ॥४२॥
बहुरसफलोपेतं त्रिविधैर्जन्तुभिश्चितम्। पर्वतांश्च बहूंस्तत्र चकार च पितामहः ॥४३॥
सानुधातुमयान्[१४] शैलान् सपक्षान्बहुशो बहून्। नद्यस्तत्र प्रजायन्ते गिरिगह्वरसानुतः ॥४४॥
द्यावारोहणहैतुक्यो मोक्षकामफलप्रदाः। दक्षिणस्यां दिशि धाता गत्वा विन्ध्यं चकार सः ॥४५॥
सहस्रशिखरैर्विद्धं लताभिश्च द्रुमैर्वृतम्।[१५] तद्याम्ये स समागत्य ससर्ज्ज बहुशोऽचलान् ॥४६॥
नानाद्रुमलताकीर्णान् बहुधातुविभूषणान्। मलयं च गिरिश्रेष्ठं ससर्ज्ज पुनरात्मभूः ॥४७॥
मेरूप्रतिमरूपेण किरणेन सदार्च्चितम्। नानारत्नसमाकीर्णं नानाद्रुमसमाकुलम् ॥४८॥
दिव्यगन्धमहोल्लासं दिव्यचन्दनवृक्षकम्। सहस्रयोजनायामं तदर्द्धेन समुच्छ्रितम् ॥४९॥
स्वर्णरौप्याकरै रत्नैः शोभितं परमाचलम्। नदीश्च विपुला वृत्ताः पुलिनद्रुमशोभिताः ॥५०॥
वेत्रलताद्रुमैर्युक्ताः ससर्ज्ज विविधा बहूः। सानुशिखरजा धाता वैतरणी तथा पुनः ॥५१॥
नानातीर्थानि जायन्ते सङ्गमे विविधानि च। प्रतीच्यां दिशि गत्वाऽजो भगवान् भूतभावनः ॥५२॥
ससर्ज पर्वतं रम्यमर्धकाञ्चनराजितम्। अर्धञ्च सूर्यसङ्काशमेकतश्चन्द्रसन्निभम् ॥५३॥
तेजोभ्यां युगपद्व्याप्तं सूर्य्याचन्द्रमसोरिव। सानुमन्तं गिरिश्रेष्ठमश्मवन्तं सुशोभनम् ॥५४॥
बहुयोजनविस्तारं शतयोजनमुच्छ्रितम्। सर्वकामफलैर्द्दिव्यैर्वृत्तं मनोरमं द्रुमैः ॥५५॥
सर्वत्र काञ्चनं गेहं दधानं[१६] स्वर्णवेदिकम्। काञ्चनरौप्यवृक्षाढ्यं पुष्पहासैः स्मिताननम्[१७] ॥५६॥

---

त्यो महेन्द्र पर्वत प्रातःकालिक सूर्यसमान सुनौला शिखर भएको, सय योजन अग्लो सुवर्णमय शिखरहरूले सम्पन्न, सम्पूर्ण धातुहरूले सुशोभित, सबैथरी रुख र लहराहरूले सम्पन्न, सबै फूलहरूद्वारा सुशोभित धेरै रस हुने फलहरूले स्पृहणीय र विभिन्न प्राणीहरूले व्याप्त थियो। त्यसको रचनापछि उहाँले अग्ला शिखर भएका, अनेक धातुले सम्पन्न अनेक पर्वतहरूको सृजना गर्नुभयो। त्यहाँ पहाडका गुफा र शिखरबाट स्वर्ग लैजाने साधन बनेका, मोक्ष र कामना सिद्ध गर्ने थुप्रै नदीहरूको प्रादुर्भाव भयो। त्यसपछि ब्रह्माजीले दक्षिण दिशामा गएर विन्ध्याचलको निर्माण गर्नुभयो। यो पर्वत हजार शिखर, विभिन्न किसिमका वृक्ष र लहराहरूले युक्त छ। त्यस पर्वतभन्दा दक्षिणमा गएर ब्रह्माजीले विभिन्न रुख, वृक्ष, लहरा र धातुहरूले युक्त भएका अरू पनि धेरै पर्वतहरूको सृष्टि गर्नुभयो ॥४१–४६॥

त्यसपछि ब्रह्माजीले मेरुतुल्य आकार भएको, विभिन्न किसिमका रत्नहरू र वृक्षहरूले युक्त, प्रशंसनीय मलयाचल पर्वतको सृजना गर्नुभयो। यो पर्वत दिव्य सुगन्धले गर्दा अत्यन्त उल्लासदायक बनेको छ। दिव्य चन्दनका रुखहरूले सम्पन्न भएको छ। हजार योजन चौडा र पाँच सय योजन अग्लो छ। सुवर्ण तथा चाँदीको खानी र रत्नले शोभायमान यो पर्वत छ। तीरमा विभिन्न किसिमका रुखहरूले सुशोभित ठूला–ठूला नदीहरू यहाँ छन्। त्यसपछि फेरि ब्रह्माजीले वेतका लहराहरूले युक्त थुप्रै नदीहरू बनाउनुभयो, अनि पहाडको शिखरबाट झरेकी वैतरणी नदीको सृष्टि गर्नुभयो। ती नदीहरूका सङ्गममा अनेक किसिमका तीर्थहरू उत्पन्न भएका छन् ॥४७–५११/२॥

त्यसपछि प्राणीको कल्याण गर्न चाहने ब्रह्माजीले पश्चिमतिर गएर आधा सुनले बनेको आधा सूर्यजस्तो एकातिरबाट हेर्दा आधा चन्द्रमाजस्तो ऋषभ पर्वतको सृजना गर्नुभयो। सूर्य र चन्द्रमाको तेजले एकैचोटि ढाकेजस्तो उज्यालो देखिने विभिन्न शिखरले युक्त भएको यो पर्वत ढुङ्गै–ढुङ्गाले बनेको र सुन्दर देखिन्छ। धेरै योजन फैलिएको र सय योजन अग्लो यो पर्वत सबै किसिमका कामना पूर्ण गर्ने दिव्य फलहरूले युक्त वृक्षहरूद्वारा अत्यन्त सुशोभित भएको छ। यस पर्वतका सबैतिर सुनैसुनले बनेका घरहरू छन्। जताततै सुनका चौतारीहरू छन्। सुन र चाँदीजस्ता रुखहरूले भरिएको यो पर्वत फूलहरूको विकासले समृद्ध बनेको छ ॥५२–५६॥

---

१४. सानुमान् धातुमान्, इति न.सं.पु.पाठः।
१५. साहस्रशिखरैर्द्दिव्यैर्विविधद्रुलतावृतम्, इति न.सं.पु.पाठः।
१६. सर्व्वतः, इति न.सं.पु.पाठः।
१७. समृद्धितम्, इति न.सं.पु.पाठः।

अस्ताचलं महाशैलमृषभं नाम चोच्छ्रितम्। महेन्द्रमपरं शैलं शतयोजनमुच्छ्रितम् ॥५७॥
जातरूपोद्भवैः शृङ्गैर्बहुधातुसमायुतम्। चकारागस्त्य मेदिन्यां प्रजाक्षोभमिवाचलम् ॥५८॥
नानाद्रुमलताकीर्णं सर्व्वपुष्पोपशोभितम्। ततः ससर्ज शैलेन्द्रं सर्व्वतेजःप्रशोभनम् ॥५९॥
धातुशिलासमायुक्तं बहुद्रुमलतायुतम्। शोभितं तं महाशृङ्गैर्जातरूपमयैर्द्रुमैः ॥६०॥
आसारैः सानुसञ्जातैर्बहुपुष्पमनोहरैः।[१८] सर्व्वौषधिनिधानं तं[१९] ससर्ज्ज गन्धमादनम् ॥६१॥
औषधीनाञ्च धातूनां तेजोभिश्च समुज्ज्वलम्। षष्टिं गिरिसहस्राणां पश्चिमे सन्न्यवेशयत्[२०] ॥६२॥
सर्व्वफलोद्भवैर्वृक्षैर्युक्तं पुष्पोपराजितैः। नाव्या पारा अपारा हि नद्यस्तेभ्यो विसुस्रुवुः ॥६३॥
पाविन्यः कामदाः सद्यो बहुसङ्गमसंयुताः। गत्वोदीच्यां दिशि स्रष्टा रत्नकूटं सुशोभनम् ॥६४॥
बहुधातुसमायुक्तं वैदूर्य्यमणिराजितम्। जातरूपप्रभैः शृङ्गैर्हेमवृक्षलताढ्यकैः ॥६५॥
जाम्बूनदरसोत्पन्नैर्जलैः कूटप्रपातनैः। हेमरौप्यगृहैर्य्युक्तं गुहादरीसमायुतम् ॥६६॥
अनेकरत्नचित्राढ्यं ससर्ज्ज गिरिमुत्तमम्। शतयोजनविस्तारं शतयोजनमुच्छ्रितम् ॥६७॥
दिविस्थानां च सर्वेषां हर्षदायकमङ्गिनाम्। मन्दरं च ततश्चक्रे हेमरौप्यशिलामयम् ॥६८॥

---

हे अगस्त्य मुनि ! यसपछि ब्रह्माजीले ऋषभ नाम गरेको अर्को अग्लो अस्ताचल पर्वत सृजना गर्नुभयो। त्यसपछि उहाँले सय योजन अग्लो महेन्द्र नाम गरेको अर्को पहाडको सृष्टि गर्नुभयो। सुवर्णमय शिखरहरू र विभिन्न धातुहरूले युक्त भएको यो पर्वत आफ्नो विशालताले पृथ्वीका नरनारीहरूलाई क्षुब्ध गराउने क्षोभ झैं देखिन्छ ॥५७-५८॥

त्यसपछि ब्रह्माजीले विभिन्न किसिमका लहरा र वृक्षले युक्त भएको सबैथरी फूलहरूले शोभायमान तथा सम्पूर्ण तेजले सुशोभित पहाडको सृजना गर्नुभयो। यो पर्वत विभिन्न धातुका शिलाहरू, धेरै वृक्ष र लहराहरू तथा सुवर्णमय ठूला-ठूला शिखरहरूले शोभायमान छ ॥५९-६०॥

ब्रह्माजीले शिखरबाट उत्पन्न भएका झरनाहरू, विभिन्न फूलहरू र जडिबुटीहरूले युक्त भएको गन्धमादन पर्वतको सृजना गर्नुभयो। यो पर्वत औषधि र गैरिकादि धातुहरूको तेजले अत्यन्त उज्यालो देखिन्छ। त्यसपछि ब्रह्माजीले पश्चिमतिर गएर हरेक किसिमका फलफूलहरूले युक्त भएका रुखहरू, विभिन्न फूलहरूले सुशोभित साठी हजार पहाडहरू सृजना गर्नुभयो। हे अगस्त्य मुनि ! ती पहाडहरूबाट डुङ्गाले तर्न सकिने, तर्नै नसकिने, विभिन्न सङ्गमले युक्त भएका, कामना पूर्ण गर्ने, पवित्र नदीहरू बगेका छन् ॥६१-६३॥

त्यसपछि ब्रह्माजीले उत्तर दिशामा गएर धेरै धातुहरूले युक्त भएको, वैदूर्यमणिले सुशोभित, सुवर्ण कान्तिमय शिखरले युक्त, सुवर्णमय रुख र लहराले पूर्ण भएको, शिखरबाट झरेका सुवर्णमय झरनाले समन्वित, सुन र चाँदीका घर तथा गुफा र ओडारहरूले सम्पन्न, विभिन्न रत्नमय रत्नकूट नामक पर्वतको सृजना गर्नुभयो। यो पर्वत सय योजन फैलिएको र सय योजन अग्लो छ। स्वर्गमा बस्ने प्राणीहरूका निम्ति पनि यो पर्वत आनन्ददायक बनेको छ ॥६४-६७½॥

त्यसपछि ब्रह्माजीले सुन र चाँदीका शिलाहरूले युक्त भएको मन्दराचल पर्वत बनाउनुभयो। यो पर्वत विभिन्न धातुहरूले युक्त भएको र धेरै तेजले सम्पन्न छ ॥६८॥

---

१८. सानूद्भूतैश्च धाराभिर्बहुपुष्पोपशोभनैः, इति न.सं.पु.पाठः। १९. सर्व्वौषधिसमुद्भूतम्, इति न.सं.पु.पाठः।
२०. षष्टिं गिरिसहस्राणि पश्चिमे सन्निवेशयत्, इति न.सं.पु.पाठः।

बहुधातुसमायुक्तं बहुतेजःसमाकुलम्। चित्रसानुं सुसानुं च बहुसानुं तथापरम् ॥६९॥
मणिसानुं तडिद्वन्तं ज्योतिःसानुं धरोत्तमम्। पुष्पफललतोपेतं हेमलतासमावृतम् ॥७०॥
बहुवृक्षौषधियुक्तं सर्वरत्नविभूषितम्। विंशतियोजनायाम[२१] दशयोजनमुच्छ्रितम् ॥७१॥
चत्त्वारिंशत्तथा त्रिंशत्पञ्चाशच्च तथापरम्। षष्टिश्च सप्ततिश्चैव[२२] चाशीतिर्नवतिस्तथा ॥७२॥
योजनानाञ्च केषाञ्चिद् विस्तारेणोच्छ्रितं[२३] तथा। बहुशैलान् तथा चक्रे सर्व्वद्रुमविभूषितान् ॥७३॥
नानाकरसमायुक्तान् बहुधातुरसोद्भवान्। नद्यो विसुस्रुवुस्तेभ्यो हेमवालूज्ज्वलाम्बराः[२४] ॥७४॥
हेमवेत्रवलत्पत्रा हेमपुष्पोपशोभिताः। हिरण्याश्मतरङ्गिण्यो हिरण्योदकसंयुताः ॥७५॥
बहुसङ्गमसंयुक्ताः पाविन्योऽतिभ्रमाकुलाः।
ततो विधाता दिशि चोत्तरस्याञ्चकार गत्वा हि गिरीन् स भूयः।
तत्प्रान्तरेष्वेवमलं दिगद्रीन् कृत्वा विधिज्ञो गिरिशप्रसादात् ॥७६॥
मेरोरुत्तरभागेऽसौ सुवर्णाद्रिं चकार सः। बहुयोजनविस्तारं शतयोजनमुच्छ्रितम् ॥७७॥
बहुधातुसमायुक्तं बहुरत्नमयं धरम्। स्वर्णपुष्पप्रफुल्लाढ्यं स्वर्णवृक्षसमाकुलम् ॥७८॥
हिरण्यपद्मफुल्लाढ्यं निकुञ्जैः स्वर्णसम्भवैः। राजितं स्वर्णपाषाणैर्गुहादरीसमायुतम् ॥७९॥
प्रणालीभिश्च वापीभिः सानुभिश्च मनोरमैः। सिद्धिरसोज्झरैर्दिव्यैः स्वर्णजलप्रपातनैः ॥८०॥
तत्र स्वांशं च हेरम्बं प्रतिष्ठाप्याधिकं मुने। इत्थं विधाय[२५] तं स्रष्टा पूर्व्वदिशि समाव्रजत् ॥८१॥
गत्वा प्राचीं दिशं स्रष्टा चकार गिरिमुत्तमम्। चित्रसानुं तथा भूयः सर्व्वौन्नत्येन निर्मितम् ॥८२॥
नानाधातुसमायुक्तैर्बहुगैरिकसम्भवैः। सर्व्वरत्नसमायुक्तैः सर्व्वतेजोभिसारकैः ॥८३॥

---

त्यसपछि ब्रह्माजीले विचित्र शिखर भएको, सुन्दर शिखर भएको, त्यस्तै मणिको शिखर भएको, अनेक शिखर भएको उत्तम पहाडको सृजना गर्नुभयो। यो पहाड फल, फूल तथा सुवर्णमय लहराले युक्त भएको छ। विभिन्न रुख, औषधि र विभिन्न किसिमका रत्नहरूले विभूषित यो पर्वत बीस योजन फैलिएको र दश योजन अग्लो छ ॥६९-७१॥

त्यसपछि ब्रह्माजीले चालीस योजन, तीस योजन, पचास योजन, साठी योजन, सत्तरी योजन, असी योजन, नब्बे योजन फैलिएका र त्यत्तिकै अग्ला, सबै किसिमका वृक्षले सुशोभित, विभिन्न किसिमका खानीले युक्त तथा धेरै धातुका रसहरू पैदा हुने पर्वतहरूको सृजना गर्नुभयो। ती पहाडहरूबाट सुवर्णमय टल्कने बालुवा भएका उत्तम नदीहरू बगेका छन्। विभिन्न सङ्गम भएका ती नदीहरू सुवर्णमय वेत्रलता, पत्र र फूलहरूले सुशोभित छन्। सुवर्णमय शिलाले युक्त भएका ती नदीहरूको पानी सुनौलो छ। धेरै सङ्गमहरूले युक्त भएका पवित्र ती नदीहरू धेरै भुमरीले सम्पन्न छन् ॥७२-७५॥

त्यसपछि ब्रह्माजीले उत्तर दिशामा गएर धेरै पर्वतहरूको सृजना गर्नुभयो। शिवजीको अनुग्रहले त्यसको छेउ-छाउमा धेरै साना पर्वतहरू बनाउनुभयो। ब्रह्माजीले सुमेरु पर्वतको उत्तरपट्टि धेरै योजन फैलावट र सय योजन उचाइ भएको सुवर्णपर्वतको रचना गर्नुभयो। विभिन्न धातु तथा रत्नहरूले युक्त सुवर्णपर्वत विभिन्न फूलले समृद्ध र स्वर्णमय वृक्षहरूले पनि सम्पन्न छ। यो पर्वत सुवर्णमय कमलका फूल, सुवर्णमय कुञ्ज, सुवर्णमय पाषाण तथा गुफाहरूले युक्त छ। यो पर्वत खोल्सा, तलाउ, सुन्दर शिखर र सिद्धरसलाई झार्ने दिव्य स्वर्णमय पानीका झरनाले सुशोभित छ ॥७६-८०॥

हे मुनि! त्यहाँ आफ्नो अंश मानिएका गणेशलाई स्थापना गरेर ब्रह्माजी पूर्व दिशामा जानुभयो। पूर्व दिशामा गएर ब्रह्माजीले छिरबिरे शिखर भएको चित्रसानु नामको सबैभन्दा अग्लो पहाड सृजना गर्नुभयो। विभिन्न किसिमका गैरिकादि धातुहरूले युक्त भएको यो पर्वत आफ्नो तेजले सबै तेजलाई फिका पार्ने र रत्नहरूले सुशोभित भएको छ ॥८१-८३॥

---

२१. विंशयोजनविस्तारम्, इति न.सं.पु.पाठः।
२२. षष्टिञ्च सप्तमं चैव, इति न.सं.पु.पाठः।
२३. विस्तारमुच्छ्रितं, इति न.सं.पु.पाठः।
२४. हेमवालूज्ज्वलाः वरा, इति न.सं.पु.पाठः।
२५. इत्येवं कृत्य, इति न.सं.पु.पाठः।

बहुकाञ्चनसम्भूतैर्बहुपुष्पोपशोभितैः । रक्तोत्पलसमाकीर्णैः सरोभिः समलङ्कृतम् ॥८४॥
रम्यवेदीसमायुक्तैः सानुभिः समलङ्कृतैः । हरितालैः सुरङ्गैश्च मनःशिलामनोरमैः ॥८५॥
रक्तवृक्षसमायुक्तै रक्तवेत्रलतामयैः । रक्ततेजोमयं शैलं रक्ताभजलनिर्झरैः ॥८६॥
बहुयोजनविस्तारं शतयोजनमुच्छ्रितम् । अगम्यं सर्व्वभूतानां सर्व्वसारमयं शुभम् ॥८७॥
आर्य्या तत्क्षणमागत्य[२६] शैलराजे समाविशत् । चतुःषष्टिगणैस्सार्द्धं योगिनीकोटिभिर्मुदा ॥८८॥
चित्रसानुं विधिः कृत्वा विधाता लोकभावनः । भूयः कर्तुं गिरिं धीरोऽवाचीं दिशं तथाऽगमत् ॥८९॥
समागत्य ततो ब्रह्मा चकार गिरिमुत्तमम् । कैलाशं सुमहाकूटं सर्व्वतेजोमयं शिवम् ॥९०॥
रौप्याभं राजितं शैलं नानाधातुसमुद्भवैः । पाषाणै राजितैर्द्दिव्यै रजताभमहाद्रुमैः ॥९१॥
राजितं सानुभिर्भव्यै राजतोद्भववेत्रकैः । रजतोद्भवराजीभी राजतैः कुसुमैस्तथा[२७] ॥९२॥
रजताभजलैर्युक्तैः सरोभी रजतोद्भवैः । रजतोत्पन्नवल्लीभिः श्वेतफुल्लनिकुञ्जकैः ॥९३॥
रजताभजलोत्पन्नैः सर्व्वतेजोमयैः शुभैः । रजताभसुधाभूतगङ्गाधारानिपातनैः ॥९४॥
नानारसफलोत्पन्नैः षड्ऋतुजैर्मनोहरैः । त्रिगुणैर्वायुभिर्य्युक्तं सर्व्वसत्त्वानुकम्पकम् ॥९५॥
बहुयोजनविस्तारं शतयोजनमुच्छ्रितम् । रौप्यताम्रमयागारं गुहाढ्यं रत्नसंयुतम् ॥९६॥
जाम्बूनदरसोद्भूतं पारिजातं सुखावहम् । महतः पर्व्वतस्याग्रे पुष्पहासं न्यवेशयत् ॥९७॥
एकयोजनविस्तारमेकयोजनमुच्छ्रितम् । सिद्धिरसरसोपेतं मनोवाञ्छाफलप्रदम् ॥९८॥
स्फाटिकाढ्यं महोल्लासमणिमयं मनोरमम् । सदानन्दं महाशैलं सर्व्वतेजोऽभिहारिणम् ॥९९॥

---

धेरै सुवर्णमय फूल तथा रक्तकमलले ढाकिएका तलाउहरूद्वारा सो पर्वत विभूषित भएको छ। राम्रा वेदीहरूले युक्त, शिखरहरूले विभूषित, हरिताल, राम्रो रङ्गर मनःशिलाले गर्दा सुन्दर देखिने, राता रुख र वेत्रलताले युक्त, रातो वर्ण भएका पानीका झरनाले सुशोभित यो पर्वत धेरै योजन फैलिएको र अग्लो छ। सम्पूर्ण सारवस्तुले युक्त भएको, कल्याणकारी यो पर्वत साधारण प्राणीहरूका लागि अगम्य रहेको छ। ब्रह्माजीले रत्नादिले परिपूर्ण त्यस्तो सुन्दर पर्वतको रचना गरेपछि भगवती खुसी हुँदै चौसट्ठी गण र एक करोड योगिनीका साथ त्यस पर्वतमा आएर बस्नुभयो ॥८४-८८॥

लोककल्याणकारी सृष्टिकर्ता ब्रह्माजी त्यस्तो विचित्र शिखर भएको चित्रसानु नामको उत्तम पर्वत बनाएर फेरि उत्तरदिशातिर जानुभयो। त्यहाँ पुगेर ब्रह्माजीले अत्यन्त ठूलो शिखर भएको, सबै किसिमका तेजले सम्पन्न, सबैको कल्याण गर्ने, कैलास पर्वतको सृजना गर्नुभयो। चाँदीसमान यो पर्वत विभिन्न धातुमय पाषाण र रजतमय ठूला वृक्षहरूले सुशोभित छ। यो पर्वत सुन्दर शिखर, चाँदीमय वेत्रलता, रजतमय वृक्षका ताँति र फूलहरूले विभूषित छ ॥८९-९२॥

चाँदीको जस्तो कान्ति भएका जलले युक्त तलाउहरू, चाँदीबाट उत्पन्न भएका लहराहरू तथा सेता फूलका कुञ्जहरूले यो पर्वत शोभायमान छ। चाँदीको जस्तो रङ्ग भएको पानीबाट उत्पन्न चाँदीझैँ सेता गङ्गाका धाराको प्रवाहले युक्त भएको यो पर्वत विभिन्न रस, छवटै ऋतुमा फल्ने सुन्दर फल तथा विभिन्न किसिमका वायुले सुशोभित भई सम्पूर्ण प्राणीहरूका लागि करुणामय बनेको छ ॥९३-९५॥

धेरै योजन फैलिएको र सय योजन अग्लो यस पर्वतमा चाँदी तथा तामाले बनेका घर र गुफाहरू रहेका छन् र यो पर्वत रत्नैरत्नले सम्पन्न देखिन्छ। ब्रह्माजीले सुवर्णमय रसबाट उत्पन्न भएको आनन्ददायक पारिजातको वृक्षलाई यस विशाल पर्वतको शिखरमा रोपेर फूल फुलाउनुभयो। सिद्धिरसले युक्त, मानसिक इच्छा पूर्ण गर्ने, फटिक मणिले भरिएको, अत्यन्त सुन्दर यो पर्वत एक योजन फैलिएको र एक योजन नै अग्लो छ। अत्यन्त आनन्द दिने यो पर्वत सबै तेजहरूले सम्पन्न भएको हुँदा रमणीय बनेको छ ॥९८-९९॥

---

२६. आर्याप्रेक्षसमागत्य, इति न.सं.पु.पाठः। २७. राजराजतद्रुम राजताभीकुसुमैस्तथा, इति न.सं.पु.पाठः।

तमीड्यो शङ्करो देवः समध्यतिष्ठदीश्वरः। चतुःषष्टिगणैः सार्द्धं गिरिराजं निरन्तरम् ॥१००॥
त्रिकूटं च तथा कृत्वा भिन्नाञ्जनचयोपमम्। याम्यां दिशं पुनर्धाता प्रययौ हि यदृच्छया ॥१०१॥
ततो ध्यात्वा महेशानं सर्व्वदेवमहेश्वरम्। प्रचकार विधानज्ञो हिमवन्तं नगेश्वरम् ॥१०२॥
सहस्रकूटसाश्चर्य्यः सर्वौन्नत्यमनोहरः[२८]। सर्वातिरिक्तसारेण हिमैर्गिरिर्विराजते ॥१०३॥
हिमरूपैर्विधिर्धर्मं संसृज्य त्वरितं मुदा। धर्मरूपैर्हिमैस्तैश्च धात्रा विभूषितो गिरिः ॥१०४॥
पुण्यस्थानं महाशृङ्गं धत्ते शैलोत्तमोत्तमः। रौप्याभो विविधाकारो व्योमलेही सुरेश्वरः ॥१०५॥
नानारत्नमयैः शृङ्गसाहस्रैरुपसेवितः। तुषारभूषितैः शृङ्गै रजताभैर्व्विराजितः ॥१०६॥
पुण्यतीर्थसहस्रैश्च कोटिकोटिसुनिर्झरैः। सहस्रैः सानुभिर्य्युक्तैः सहस्रपादसम्भवैः ॥१०७॥
क्वचिज्जातमयैः शृङ्गैर्वैदूर्य्यमणिसम्भवैः। प्रवालाङ्कुरसम्भूतैः विद्रुमादिविराजितैः ॥१०८॥
पुष्परागमयैः शृङ्गैः स्फाटिक्याद्यैः सुनिर्मलैः। क्वचिन्मरकतोद्भूतैरिन्द्रनीलमयैः क्वचित् ॥१०९॥
क्वचिद्वज्रमयैः शृङ्गैश्चन्द्रकान्तमयैस्तथा। सूर्यकान्तमयैर्दिव्यैर्नीलाञ्जनचयोपमैः ॥११०॥
ताम्रमयैर्महाशृङ्गैर्लोहमयैस्तथा परैः। त्रपुसीसमयैः शृङ्गैर्बहुधातुमयैस्तथा ॥१११॥
हरितालमयैः शृङ्गैर्म्मनःशिलामनोहरैः। गैरिकमयसम्भूतैरञ्जनाचलमेचकैः ॥११२॥
विविधैः सानुभिर्न्नित्यं भूषितो गिरिभूषणः। जाम्बूनदसमुद्भूतकुट्टिमोत्तमसुन्दरैः ॥
रजताकारसमृद्धचन्द्रशालामहोज्ज्वलैः ॥११३॥
सुतेजोमयवज्राद्यचन्द्रशालाविराजितैः। वैदूर्य्यमयनिर्म्माणचन्द्रशालाविभूषितैः ॥११४॥

---

आराध्य भगवान् शिव चौसठ्ठी गणलाई साथमा लिएर पर्वतराज कैलासमा निरन्तर बस्नुहुन्छ ॥१००॥

त्यसपछि कालो गाजलको थुप्रोजस्ता तीनवटा शिखर बनाएर ब्रह्माजी आफ्नो इच्छा अनुसार दक्षिण दिशातिर जानुभयो र सबै देवताका ईश्वर भगवान् शिवको ध्यान गरेर सृष्टिकर्ता ब्रह्माजीले पर्वतराज हिमालयको सृजना गर्नुभयो। यो पर्वत हजार शिखर भएको, आश्चर्यलाग्दो, सबैभन्दा अग्लो, सुन्दर, अतिरिक्त सार वस्तुले सम्पन्न र हिउँ नै हिउँले सुशोभित देखिन्छ। यसपछि प्रसन्न हुँदै ब्रह्माजीले तुरुन्तै हिउँरूपी धर्मको सृजना गरेर हिमधर्मले त्यस पहाडलाई सुशोभित तुल्याउनुभयो ॥१०१-१०४॥

यो पर्वत अग्ला शिखर भएको पवित्र स्थानले युक्त छ। सबै पहाडमा अत्युत्तम ठहरिएको चाँदीजस्तो विभिन्न आकारले युक्त भएको यो पर्वत गगनचुम्बी र देवताहरूको पनि आश्रयका रूपमा रहेको छ। नानाथरी रत्नहरूले युक्त, हजारौं शिखरद्वारा सुशोभित, रजतमय हिउँले ढाकिएका शिखरले यो पर्वत सुशोभित छ। हजारौं पुण्यतीर्थ, करोडौं झरना, हजारौं शिखरहरू र हजारौं प्रत्यन्त पर्वतहरूले यो हिमालयपर्वत सुशोभित छ ॥१०७॥

यसमा कतै सुनका, कतै वैदूर्यमणिका, कतै मुगाका, कतै विद्रुममणिका, कतै पुष्परागमणिका, कतै निर्मल स्फटिकमणिका, कतै मरकतमणिका, कतै इन्द्रनीलमणिका, कतै वज्रका, कतै चन्द्रकान्तमणिका, कतै सूर्यकान्तमणिका कतै गाजलको राशिजस्ता, कतै तामाका, कतै फलामका, कतै शिशाका, कतै धेरै धातुहरू मिलेर बनेका, कतै हरितालका, कतै मनशिलाले गर्दा सुन्दर बनेका, कतै गैरिकादि धातुबाट बनेका र कतै गाजलको पर्वतजस्ता चिल्ला विभिन्न टाकुराहरूले यो पर्वतराज हिमालय अलङ्कृत भएको छ ॥१०८-११२॥

त्यस पर्वतका शिखरहरू सुवर्णमय भूभाग भएका कारण रमणीय छन् भने चाँदीले बनेका अग्ला घरहरूले गर्दा अत्यन्त उज्याला देखिन्छन्। अत्यन्त तेजिला वज्रमणि र वैदूर्यमणिले बनेका अग्ला-अग्ला घरहरूले गर्दा त्यस पर्वतका शिखर सुशोभित भएका छन् ॥११३-११४॥

---

२८. सहस्रकूटमाश्चर्यः सर्वोन्नताद्यसुन्दरः, इति न.सं.पु.पाठः।

इन्द्रनीलसमुद्भूतकुट्टिमोज्ज्वलसुन्दरैः । पुष्परागसमुद्भूतकुट्टिमैर्गौरकान्तिभिः ॥११५॥
मरकतसमुद्भूतचन्द्रशालाहरित्प्रभैः । नीलाञ्जनोपलोद्भूतकुट्टिमश्यामलप्रभैः ॥११६॥
चन्द्रकान्तोत्पलोद्भूतचन्द्रशालार्ज्जुनोज्ज्वलैः । सूर्यकान्तमयोद्भूतकुट्टिमैर्लोहितप्रभैः ॥११७॥
स्फटिकोपलनिर्म्माणचन्द्रशालार्ज्जुनप्रभैः । पद्मरागसमुद्भूतकुट्टिमशोणसुन्दरैः ॥११८॥
प्रवालमयनिर्माणचन्द्रशालारुणप्रभैः । नानारत्नाढ्यनिर्माणकुट्टिमकर्ब्बुरोज्ज्वलैः ॥११९॥
इत्थं भूतैर्महाशृङ्गै राजमानो हिमालयः । जाम्बूनदमयैर्वृक्षै रजतोद्भवपादपैः ॥१२०॥
त्रपुसीसोद्भवैर्वृक्षै रजतोद्भवशाखिभिः । कनकोद्भववल्लीभिः स्वच्छराजतसम्भवैः ॥१२१॥
हिरण्यकुसुमैर्भव्यैः प्रसूनैर्बहुरङ्गजैः । बहुलतोद्भवैः कुञ्जैर्दर्भाङ्कुरैस्तथाविधैः ॥१२२॥
हिरण्यनलिनैर्दिव्यै राजताकारपुष्करैः । वापीभिर्विविधैः खातैर्गुहाभिः कन्दरैस्तथा ॥१२३॥
भृगुभिर्न्निर्भरैः कूटैर्गण्डशैलैर्महाद्भुतैः । शुशुभे गिरिराजेन्द्रो शिखरैर्बहुनामभिः ॥१२४॥
भृगुपातैर्नदीभिश्च बहुतीर्थैस्तदा मुने । केदारबद्रिकाकारैस्त्रिशीर्षशिखरैस्तथा ॥१२५॥
विष्ण्वाश्रममहाकूटकूर्म्माद्रिशिखरैः पुनः । रौप्यशिखरिजैर्बद्रीब्रह्मशिखरकोटिभिः ॥१२६॥
अग्निशृङ्गैकशृङ्गोमापर्व्वतशेखरैस्तथा । यत्रैव भगवान् धर्मो द्रवीभूतोऽत्र हेतुतः ॥१२७॥
तथाविधोऽप्यधर्मो हि धर्म्मतीर्थे न के तथा । धर्मकूटाभ्रलेहिभिः सिद्धाश्रमनगोत्तमैः ॥१२८॥
गण्डाद्रिमुक्तिपाण्डवद्रिश्यामलशिखरैस्तथा । वृत्ताहार्य्यत्रिशूलाद्रिमुञ्जवत्शिखरैः पुनः ॥१२९॥
बुद्धाश्रमाद्रिविष्ण्वद्रिगौर्य्यद्रिशिखरैर्व्वरैः । कुशपर्वतकामाद्रिनीलाद्रिशिखरैर्व्वरैः ॥१३०॥
अग्निशेखरभस्माद्रिकामाद्रिसुन्दराद्रिभिः । राजितो गिरिराजेन्द्रः शृङ्गैर्विविधनामभिः ॥१३१॥
पूर्वतो दक्षिणे शृङ्गे प्रेक्ष्याच्युतो हिमालयम् । हर्षं न्यवीविशद्विष्णुर्बद्रिकाद्रिं गणैः सह ॥१३२॥

---

इन्द्रनीलमणि र पुष्परागमणिबाट बनेका भूभागले गर्दा सेतो कान्ति भएका, मरकतमणिबाट बनेका घरहरूले गर्दा हरियो वर्ण भएका र गाजले वर्णका ढुङ्गाले बनेका भूभागले गर्दा रातो वर्ण भएका, चन्द्रकान्तमणिले बनेका अग्ला घरहरूले गर्दा सेता र उज्याला भएका, सूर्यकान्तमणिले बनेका फर्सले गर्दा रातो वर्ण भएका, स्फटिकमणिका शिलाले बनेका अग्ला घरहरूले गर्दा श्वेतवर्ण भएका, पद्मरागमणिबाट बनेका फर्सले गर्दा रातो र सुन्दर वर्ण भएका, मुगाले बनेका घरहरूले गर्दा रातो वर्ण भएका, विभिन्न रत्नले बनेको भूमिको बनोटले गर्दा छिर्के-मिर्के र उज्याला देखिने यस्ता शिखरले हिमालय सुशोभित भएको छ ॥११५-११९॥

सुवर्णमय, रजतमय र शिशामय रुखहरू, सुवर्णमय लहरा, स्वच्छ रजतमय वृक्षबाट पैदा भएका सुन्दर सुवर्णमय पुष्प, विभिन्न लताबाट बनेका कुञ्ज, दूर्वाङ्कुर, दिव्य सुवर्णमय कमल, रजतमय कमल, तलाऊ, विभिन्न खाडल, गुफा तथा कन्दराहरू, झरना, टकुरा, अद्भुत गण्डशैल (पहाडबाट झरेका ठूला-ठूला ढुङ्गा) र विभिन्न नाम भएका शिखरहरूले हिमालय अत्यन्त शोभायमान छ ॥१२०-१२४॥

कहाली लाग्दा भीरहरू, नदीहरू र केदार, बद्रीजस्ता विभिन्न तीर्थहरू, त्रिशीर्ष शिखर, विष्णु आश्रम, अग्लो शिखर भएको कूर्माचल, रजतमय शिखर भएको पर्वत, बदरीनाथपर्वत, ब्रह्मशिखर, अग्निशृङ्ग, एकशृङ्ग, उमापर्वत आदि पहाडहरूले हिमालय सुशोभित भएको छ । जहाँ भगवान् धर्म हिमालयलाई देखेर पग्लनुभएको थियो ॥१२५-१२७॥

आकाश छुने धर्मकूट, सिद्धाश्रम, गण्डाद्रि, मुक्त्यद्रि, पाण्डवाद्रि, श्यामलशिखर, वृत्तशिखर, आहार्यशिखर, त्रिशूलाद्रि, मुञ्जशिखर, बुद्धाश्रमाद्रि, विष्ण्वद्रि, गौर्यद्रि, कुशपर्वत, कामाद्रि, नीलाद्रि तथा तिनका उत्तम शिखर, अग्निशेखर, भस्माद्रि, सुन्दराद्रि आदि अनेक नामका शिखरहरूले सुशोभित पर्वतराज हिमालय छ । त्यसको दक्षिण भागलाई देखेर गणसहित भगवान् विष्णु बदरिकाश्रम शिखरमा प्रवेश गर्नुभयो ॥१२८-१३२॥

कोटियोजनविस्तारो लक्षयोजनमुच्छ्रितः। पूर्वापरार्ण्णवौ व्याप्तस्तदधश्च तथाविधः ॥१३३॥
कोटिसानुसमायुक्तः कोटिकोट्यन्विताच्चिर्तः। कोट्यात्मजैः समं पात्रैर्हिमालयो विराजते ॥१३४॥
मेरूप्रतिमसङ्काशो हिमभूषणभूषितः। यावत्यः प्रोद्भवा नद्यस्तावत्यः कामदा भृशम् ॥१३५॥
पाविन्यः सर्व्वलोकानां मोचयन्ति हि किल्विषान्। ब्रह्मपुत्रप्रवाहेन हैमवत्या च गङ्गया ॥१३६॥
सुभद्रालकनन्दाभ्यां रेवया शतरुद्रया। कौशिकीगण्डकीभिश्च वाग्वत्या परया तथा ॥१३७॥
शिप्रावातादिभिर्द्धीरो हिमवान् राजतेऽनिशम्। कृत्वाच्छरूपिणः शैलान् सपक्षान्विविधाँश्चरन् ॥१३८॥
पवित्राँश्च पुनर्धाता ससर्ज बहुशो धरान्। ततो ब्रह्मा मनश्चक्रे जन्तून् स्रष्टुं रसातले ॥१३९॥
सर्वलोकहितात्मासौ स्थितये सर्व्वजन्मिनाम्।

ततो गिरीणाञ्च तदा दिदृक्षुर्दृप्तौजसो गत्यपराधहेतोः।
चिच्छेद शक्रः कुलिशेन पक्षाञ्छैलाश्चिरात्स्थावरतां गतास्ते ॥१४०॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे सर्वाचलोत्पत्तिर्नाम तृतीयोऽध्यायः ॥३॥

---

करोडौं योजन फैलिएको,लाख योजन गहिरो समुद्र हिमालयको तल्लो भागमा रहेको छ। करोडौं शिखरले युक्त, करोडौं पर्वतसमूहद्वारा सुहाएको र सत्पात्र करोडौं पुत्रपर्वरूद्वारा पूजित हिमालय सुशोभित भएको छ। यो पर्वत सुमेरु पर्वतजस्तै छ, हिउँले विभूषित भएको छ। यसबाट जति पनि नदी निस्किएका छन्, ती सबै इच्छा अनुसार फल दिने, पवित्र र सबै प्राणीका पाप हर्ने खालका छन्। ब्रह्मपुत्रको प्रवाह, हैमवती गङ्गा, कल्याणकारी अलकनन्दा, रेवा, शतरुद्रा, गण्डकी, उत्कृष्ट वाग्मती नदी, शिप्रा र वाता आदि नदीले यो हिमालय सुशोभित भएको छ ॥१३३-१३७½॥

त्यसपछि संसारको हित गर्ने ब्रह्माजी विभिन्न ठाउँमा पुगी सुन्दर पहाड तथा पवित्र पाखाहरूको सृजना गरेर प्राणीहरूको सृष्टि र स्थिति गर्न पाताल जानुभयो ॥१३८-१३९½॥

सम्पूर्ण संसारको हितचिन्तक इन्द्रले सबै प्राणीको हितलाई ध्यानमा राखेर पर्वतहरूले उडेर गरेको अपराधको कारणबाट वज्रले पहाडको पखेटा काटे र पर्वतहरू सधैँका लागि अचल भए ॥१४०॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गत हिमवत्खण्डमा सर्वाचलोत्पत्तिनामक तृतीय अध्याय पूर्ण भयो।

# चतुर्थोऽध्यायः

## भुवनानां रचना

स्कन्द उवाच

ततो ब्रह्मा क्षणं ध्वात्वा त्रिनेत्रं शङ्करं विभुम्। स्तुतिं चकार धर्म्मात्मा सर्वभूतोद्भवाय च ॥१॥
विधाय स्वाञ्जलिं मूर्ध्नि सनतिर्भगवान् प्रभुः।

ब्रह्मोवाच

ॐ नमोऽस्तु देवदेवाय सर्व्वभूताय भूतिने ॥२॥
भूतोद्भवाय भव्याय भूतानां पतये नमः। सृष्टिस्थितिस्वरूपाय सर्वज्ञाय विवेकिने ॥३॥
विश्वात्मने महेशाय विश्वव्यापकरूपिणे। अलक्ष्याय निरंशाय निर्विकाराय नन्दिने ॥४॥
अप्रमाणाय मानाय गम्यायागम्यदेहिने। मानापमानयोर्धर्त्रे[1] मायिनेऽमायिने नमः ॥५॥
साराय सारदेवाय संसारसंहतात्मने। अलक्ष्यायाक्षराङ्गाय क्षणरूपाय शूलिने ॥६॥
अन्तर्जाताय[2] जीवाय स्वान्तःस्थिताय शश्वते ॥७॥
तजोरूपाय तापाय त्र्यम्बकाय नमो नमः। वरदाय जगत्कर्त्रे जगतां चक्षुषे नमः ॥८॥
पञ्चात्मकोद्भवेशाय पञ्चात्मकविभूतये। धातुस्थाय विधात्रे च सर्वजगद्[3] विधायिने ॥९॥
संसारदाय रुद्राय संसाररूपिणे नमः।

स्कन्द उवाच

इति स्तवं समाकर्ण्य ज्योतीरूपो महाविभुः ॥१०॥
सन्तुष्टवान् विधात्रे च वरं दातुं प्रचक्रमे। व्यक्तं कृत्य स्वमात्मानं सर्व्वतेजोमयो विभुः ॥११॥
स्वतेजोभिः सहर्षञ्च विद्योतयन्[4] दिशोऽखिलाः।

---

अध्याय- ४

## भुवनहरूको रचना

कार्तिक स्वामीले भन्नुभयो – त्यसपछि धर्मात्मा ब्रह्माजीले एकछिन तीन नयन भएका भगवान् शङ्करको ध्यान गरेर शिरमा अँजुली बाँधी नम्र हुँदै भगवान् शिवको स्तुति गर्नुभयो। देवताका पनि देवता, सम्पूर्ण प्राणीका कल्याणकारक प्राणीहरूका कारणभूत तथा प्राणीहरूका स्वामीलाई नमस्कार छ भन्दै ब्रह्माजीले स्तुति गर्न लाग्नुभयो ॥१-२॥

ब्रह्माजी भन्नुहुन्छ– सृष्टि-स्थितिका कारण, सर्वज्ञ, विवेकशाली, स्थिरात्मा, महेश्वर, विश्वव्यापी, अलक्ष्य, निरंश, निर्विकार, आनन्ददायक, प्रमाणरहित, मानस्वरूप, गम्य र अगम्य शरीर भएका, मान तथा अपमान दुबैलाई धारण गर्ने, मायावी भईकन पनि मायारहित ईश्वरलाई नमस्कार छ ॥३-५॥

सबैका सार, सारदेव, संसारका आत्मा भएका, अलक्ष्य, अक्षराङ्ग, शूल लिने, अन्तोद्भव, जीव, अन्तःस्थित, तेजोरूप नित्यतापस्वरूप, तीन आँखा भएका ईश्वरलाई नमस्कार छ। इच्छित वरदाता, जगत्कर्ता तथा संसारका दृष्टि मानिनुहुने ईश्वरलाई नमस्कार छ। पञ्चतत्त्वका ईश्वर, पाँचै विभूतिले युक्त, विभिन्न धातुमा रहेका, सम्पूर्ण संसारको सृजना गर्ने, संसारका त्राता वा संसारको दुःख नाश गर्ने संसारका निर्माता रुद्रलाई नमस्कार छ ॥६-९॥

कार्तिक स्वामीले भन्नुभयो – ब्रह्माजीको यस्तो स्तुतिबाट ज्योतिस्वरूप महाप्रभु सन्तुष्ट हुनुभयो र ब्रह्माजीलाई वर दिनका लागि आफ्नो दिव्य तेजले सबै दिशा-विदिशालाई उज्यालो पार्दै ब्रह्माजीसामु प्रकट हुनुभयो ॥१०-११½॥

---

१. मानापमानधारिणे, इति न.सं.पु.पाठः।
२. अन्तोद्भवाय, इति न.सं.पु.पाठः।
३. विधाताय जगत्सर्वम्, इति न.सं.पु.पाठः।
४. उद्योतयन्, इति न.सं.पु.पाठः।

ज्योतीरूप उवाच

तुष्टोऽहं ते स्तवेनार्य्य सर्व्वभूतोपकारिणा ॥१२॥
वरं वरय लोकेश यत्त्वं वाञ्छसि साम्प्रतम्। दास्यामीदमहं सर्व्वं जङ्गमस्थावरात्मकम् ॥१३॥
ज्ञात्वा मां कामदं धातरुपकाराय जीविनाम्। स्तवं यः प्रपठेल्लोके तव वक्राद्विनिर्गतम् ॥१४॥
सर्व्वपातकनिर्म्मुक्तः सर्व्वकामफलं लभेत्।

ब्रह्मोवाच

त्वत्प्रसादादहं देव कृतवान् भूधरान् धरान् ॥१५॥
इदानीं स्रष्टुमिच्छामि सर्व्वभूतानि शङ्कर। अन्धीभूतं जगत्सर्व्वं कथं स्थास्यन्ति जीविनः ॥१६॥
उद्द्योतव्यं समांशेन यदि प्रेम मयि प्रभो।

स्कन्द उवाच

इत्याकर्ण्य वचो धातुर्ल्लोकानुग्रहकारकम् ॥१७॥
चिन्तयामास देवोऽसौ क्षणं तदा घटोद्भव। ततो दक्षेक्षणांशं स आदाय पाणिना विभुः ॥१८॥
ससर्ज्जादौ पुरा देवं ज्योतीरूपं महाविभुम्। तेजोरूपं जगन्नेत्रमप्रमेयमगोचरम् ॥१९॥
जगत्साक्षिणमाभाढ्यमादिदेवं सनातनम्। द्विहस्ते पद्मसंयुक्तमेकास्यं तीक्ष्णदीधितिम् ॥२०॥
त्रिनेत्रं लोहिताङ्गं तं सर्व्वदेवनमस्कृतम्। भूयः ससर्ज्ज भूतेशो भूतानां पतिमव्ययम् ॥२१॥
वामनेत्रांशमादाय सर्व्वलोकहिते रतम्। आह्लादनं महाकान्तिं सुधांशुं शीतधृष्णिकम् ॥२२॥
दिव्यरूपं महाभूतिं सर्व्वाधारस्वरूपिणम्। सोमञ्च सौम्यमूर्तिञ्च रौप्याभं सुकलेवरम् ॥२३॥

---

ज्योतिरूप ईश्वरले भन्नुभयो – हे आर्य ! सबै प्राणीको उपकार गर्ने यो स्तुतिबाट म सन्तुष्ट भएँ। हे लोकेश ! प्राणीहरूको कल्याणका लागि मलाई सम्पूर्ण वर दिन सक्ने सोचेर स्थावर वा जङ्गमसँग सम्बद्ध तिमी जे चाहन्छौ त्यो वर माग, म दिन्छु। जसले ब्रह्माजीको मुखबाट निस्किएको यो स्तुति पढ्छ, त्यो व्यक्ति सम्पूर्ण पापबाट मुक्त भई इच्छा लागेको सबै फल प्राप्त गर्न सक्नेछ ॥१२-१४॥

ब्रह्माजीले भन्नुभयो – हे भगवान् ! हजुरको कृपाले पहाड तथा वृक्षहरूको सृष्टि गरेँ, अब हे ईश्वर ! यो अँध्यारो संसारमा प्राणीहरू कसरी बस्दछन् ? यदि हजुरको ममाथि प्रेम छ भने अंशावतार लिएर हजुर प्रकट हुनुहोस् ॥१५-१६॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य ! ब्रह्माजीको प्राणीहरूप्रति कल्याणकारक यस्तो भनाइ सुनेर भगवान्‌ले एकछिन विचार गर्नुभयो र दाहिने आँखाको अंश हातले लिएर ज्योतिरूप भएका अगोचर, अप्रमेय तथा संसारका नेत्र सूर्यको सृजना गर्नुभयो। उहाँ संसारका साक्षी, प्रकाशमय सनातन, आदिदेव, दुई हातमा कमण्डलु लिएका, एउटै मुख भएका र उष्ण किरणले युक्त हुनुहुन्छ ॥१७-२०॥

त्यसपछि तीन आँखा, रातो अङ्ग भएका र सम्पूर्ण देवताहरूद्वारा नमस्कार गरिएका प्राणीका स्वामीलाई भूतपति ब्रह्माजीले सृजना गर्नुभयो। त्यसपछि फेरि उहाँले भगवान्‌को बायाँ नेत्रको अंश लिएर सबैलाई आनन्द दिने, कान्तियुक्त, शीतल किरण भएका, महाविभूति तथा दिव्यरूप भएका चन्द्रमाको सृजना गर्नुभयो। उहाँ सबैका आधार, सौम्यमूर्ति र चाँदीको जस्तो टल्कने ज्योतिले युक्त हुनुहुन्छ। उहाँका तीन आँखा, दुई हात र एक मुख छन्। उहाँको स्वरूप शान्त छ र उहाँ परोपकारी हुनुहुन्छ ॥२१-२३॥

त्रिनेत्रं द्विभुजं शान्तमेकास्यमुपकारिणं। भूयः ससर्ज्ज तेजस्वी सर्व्वतेजोमयं सुरम् ॥२४॥
ऊर्ध्वनेत्रं समादाय पाणिना दिव्यरूपिणम्। सप्ताननं महारौद्रमौर्व्वं तीक्ष्णकलेवरम् ॥२५॥
विंशत्येकेक्षणैर्युक्तं चतुर्दशभुजैस्तथा। संसृज्य त्रिसुरान् रुद्र उवाच वचनं तदा ॥२६॥
पितामहाय विप्रेश प्रादुर्भावस्य हेतुकम्।

ईश्वर उवाच

मम रूपो हरिर्ज्ञेयो विष्णो रूपमहं तथा ॥२७॥
तव रूपं हरिर्ब्रह्मन् विष्णो रूपं त्वमात्मनः। मम मूर्त्तिस्तथा त्वञ्च तव मूर्तिरहं पुनः ॥२८॥
तेन तस्य न भेदत्वं सत्यं सत्यं वदाम्यहम्। तथा नो मूर्त्तयो देवाः सूर्यचन्द्रानला जलम्[५] ॥२९॥
क्षितिव्योमानिला देवी यजमानस्तथा द्विजाः। भेदभावो न कर्त्तव्य इत्याज्ञा[६] ते मया कृता ॥३०॥
नो मूर्त्तयो महाप्राज्ञ सर्व्वभावैर्भगेन च।

स्कन्द उवाच

व्यक्तीकृत्य तदात्मानं सम्बोध्यैवं पितामहम् ॥३१॥
भासयंश्च दिशो भाभिर्ययौ कैलाशमीश्वरः। इत्येतद्वचनं श्रुत्वा रुद्रस्य परमात्मनः ॥३२॥
भूयः स्तवं तदागस्त्य चकार स पितामहः।

ब्रह्मोवाच

ॐ शिवाय विष्णुरूपाय विष्णवे शिवरूपिणे ॥३३॥
नमो देवाधिदेवाय विश्वेश्वराय भूतये[७]। नमः सुधांशुभालाय नमस्तिलकचर्च्चिने ॥३४॥
त्रिनेत्राय द्विनेत्राय द्विदोष्णे बहुबाहवे। नमो नागेन्द्रकण्ठाय नमः कौस्तुभकण्ठिने ॥३५॥
भस्माङ्गरागशोभाय घनसाराङ्गरागिणे। व्याघ्राम्बराय भर्गाय पीताम्बराय विष्णवे ॥३६॥

---

हे अगस्त्य मुनि ! त्यसपछि भगवान्ले फेरि सम्पूर्ण तेजले युक्त भएका देवताको सृजना गर्नुभयो । उहाँले माथिल्लो आँखाको अंशलाई दिव्य हातले लिएर सात मुख भएको अत्यन्त भयानक बडवानलजस्तो कर्कश शरीर भएको एक्काइस आँखा र चार हात भएका पुरुषको सृजना गर्नुभयो र ब्रह्माजीलाई जगत्को सृष्टि गर्ने कारणबारेको जिज्ञासा शान्त गर्ने उद्देश्यले भन्न लाग्नुभयो ॥२४–२६½॥

ईश्वरले भन्नुभयो – हे ब्रह्मा ! मेरो रूप विष्णु हो, विष्णुको रूप म हुँ भनेर बुझ्नुहोस्। तपाईंको रूप विष्णु हो, विष्णु तपाईंको रूप हुनुहुन्छ। मेरो मूर्ति तपाईं हुनुहुन्छ, तपाईंको मूर्ति मेरो मूर्ति हो। त्यसैले हामीमा भेद छैन। म यो सत्य भन्छु। देवता, सूर्य, चन्द्रमा, अग्नि, पानी, पृथ्वी, आकाश, हावा, देवी, यजमान र ब्राह्मण पनि सर्वतो भावले ऐश्वर्ययुक्त हाम्रै मूर्ति हुन्। हे महाप्राज्ञ ! यसमा भेद गर्नुहुँदैन, यो मेरो तपाईंलाई निर्देशन हो ॥२७–३०॥

कार्तिक स्वामीले भन्नुभयो – यसरी भगवान् शङ्कर आविर्भाव भएर ब्रह्माजीलाई सबै कुरा बुझाएर आफ्नो कान्तिले सबै दिशाहरूलाई चम्किलो तुल्याउँदै कैलासतर्फ लाग्नुभयो। भगवान्को वचन सुनेर ब्रह्माजीले फेरि पनि परमात्मा रुद्रको स्तुति गर्न लाग्नुभयो ॥३१–३२½॥

ब्रह्माजीले भन्नुभयो– विष्णुको रूप लिने शिवलाई, शिवको रूप लिने विष्णुलाई, देवताका पनि देवता, ऐश्वर्यशाली विश्वेश्वरलाई नमस्कार छ। चन्द्रमा निधारमा लिने शिवलाई र तिलक लगाउने हरिलाई नमस्कार छ। तीन आँखा हुने शिवलाई र दुई आँखा हुने हरिलाई, दुई हात हुने शिवलाई र धेरै हात हुने विष्णुलाई, घाँटीमा सर्प लगाउने शिवलाई र कौस्तुभमणि धारण गर्ने हरिलाई नमस्कार छ। शरीरभरि विभूतिको लेपन गर्ने, कपूरको सार वस्तुले शरीरलाई रङ्गाउने हरिलाई र बाघको छाला पहिरने शिवलाई तथा ज्योतिस्वरूप भएका पहेँलो लुगा लगाउने विष्णुलाई नमस्कार छ ॥३५–३६॥

---

५. सूर्यचन्द्रानलाम्भसः, इति न.सं.पु.पाठः।
६. भेदाभेद न कर्त्तव्यमित्याज्ञा, इति न.सं.पु.पाठः।
७. सर्वभावेन भूतिना, इति न.सं.पु. पाठः।
८. भूतिने, इति न.सं.पु.पाठः।

कैलासवासिनेऽजाय वैकुण्ठवासिने नमः। विविधदेहरूपाय नानाकायविधायिने ॥३७॥
कालातीताय कालाय कामकान्ताय शौरये। नमो विश्वेश्वरार्य्याय नमो विश्वम्भराय च ॥३८॥
वामदेव नमस्तुभ्यं वासुदेव नमोस्तु ते। शिवाय जलरूपाय क्षितिरूपाय विष्णवे ॥३९॥
रुद्राय व्योमरूपाय हरये वायुमूर्त्तये। ईशाय रविरूपाय कृष्णाय सोममूर्त्तये ॥४०॥
उग्राय यज्ञरूपाय वह्निरूपाय शार्ङ्गिणे। नमो भवाय मन्त्राय वेदाङ्गाय नमो नमः ॥४१॥
यजमानस्वरूपाय स्रुवरूपाय[८] वै नमः। नमो घृतात्मनेऽजाय नमो हविःस्वरूपिणे ॥४२॥
नमो भोक्त्रे च भोज्याय सुखायानन्दशश्वते। तृप्तये तृप्तिरूपाय तुष्टिरूपाय वै नमः ॥४३॥
जीवेश्वराय रुद्राय चैतन्याय नमो नमः।

स्कन्द उवाच

निशम्येति स्तवं विष्णुर्दिव्यं हरिहरात्मकम् ॥४४॥
प्रहृष्टवान् तदा तस्मै ब्रह्मणे ब्रह्मसम्भवः। ततो वरप्रदानाय व्यक्तं कृत्वा[९] कलेवरम् ॥४५॥
सन्तुष्टवान् हरिस्तस्मै प्रोवाच वचनं मुने।

विष्णुरुवाच

तुष्टोऽहं सुस्तवैर्ब्रह्मन्[१०] भवद्वक्त्राद्विनिस्सृतैः ॥४६॥
दास्येऽधुना वरं तुभ्यं शृणुष्व नः समाहितः। सृजतां सर्व्वलोकान् वै यदृच्छया रसातले ॥४७॥
सृजामि च त्वया सार्द्धं बहुनेत्र पितामह। यः पठिष्यति मर्त्यो वा स्तवं हरिहरात्मकम् ॥४८॥
अस्मत्प्रियकरं ब्रह्मन् सर्वपापैः प्रमुच्यते। धनं धान्यं यशश्चायुर्लब्ध्वा पीडाविवर्जितः ॥४९॥
असाध्यं साधयेत्क्षिप्रं सर्वशत्रून् विमर्दयेत्[११]। भूत्वा च वेदविद् विप्रो भुक्त्वा भोगान् यथेप्सितान् ॥५०॥
चतुर्वर्गफलं प्राप्य मय्यन्ते स विलेष्यत्[१२]।

---

कैलासमा बस्ने र बैकुण्ठमा बस्ने, कहिल्यै न जन्मने ईश्वरलाई नमस्कार छ। विभिन्न शरीर लिने, विभिन्न किसिमका शरीरहरूको सृष्टि गर्ने, कालभन्दा पनि पर रहेका, कालस्वरूप, अत्यन्त राम्रा भगवान्‌लाई नमस्कार छ। विश्वेश्वरले पनि पूजा गरिएका विश्वम्भर भगवान्‌लाई नमस्कार छ ॥३७-३८॥

हे वामदेव ! हजुरलाई नमस्कार छ। हे वासुदेव ! हजुरलाई नमस्कार छ। जलरूप लिने शिवजीलाई, पृथ्वीरूप लिने विष्णुलाई, आकाशरूप लिने रुद्रलाई, वायुको रूप लिने विष्णुलाई, रविको रूप लिने शङ्करलाई, चन्द्रमाको रूप लिने कृष्णलाई, यज्ञरूप लिने रुद्रलाई, वह्निको रूप लिने विष्णुलाई, मन्त्ररूप लिने शङ्करलाई र वेदाङ्गरूप लिने विष्णुलाई बारम्बार नमस्कार छ ॥३९-४१॥

यजमानस्वरूप भएका, सुरोको रूपमा रहेका ईश्वरलाई नमस्कार छ। आत्मालाई धारण गर्ने, अजस्वरूप भगवान्‌लाई नमस्कार छ र हविस्वरूप भगवान्‌लाई नमस्कार छ। भोक्तास्वरूप, भोज्यस्वरूप, सुखस्वरूप, आनन्दस्वरूप र शाश्वतरूप भएका भगवान्‌लाई नमस्कार छ। तृप्ति तथा तृप्तिरूप लिने र तुष्टिरूप लिने भएका भगवान्‌लाई नमस्कार छ। जीवका स्वामी चैतन्यस्वरूप रुद्रलाई नमस्कार छ ॥४२-४३½॥

कार्तिक स्वामीले भन्नुभयो – यस्तो हरि र हरसँग सम्बद्ध स्तुतिलाई सुनेर ब्रह्मबाट पैदा हुनुभएका भगवान् विष्णु ब्रह्माजीसँग अत्यन्त प्रसन्न हुनुभयो र उहाँलाई वर दिनका निमित्त आफ्नो शरीरलाई प्रकट गर्नुभयो। त्यसपछि उहाँले सन्तुष्ट भएर ब्रह्माजीलाई भन्नुभयो ॥४४-४५½॥

भगवान् विष्णु भन्नुहुन्छ– हे ब्रह्माजी ! तपाईंको मुखबाट निस्किएको स्तुति सुनेर म अत्यन्त सन्तुष्ट भएँ। तपाईंलाई वर दिन्छु, एकचित्त भएर सुन्नुहोस्। आफ्नो इच्छाअनुसार रसातलमा गएर सम्पूर्ण प्राणीहरूको सृष्टि गर्नुहोस्। हे धेरै आँखा भएका ब्रह्मा ! म पनि तपाईंसँगै बसेर सृष्टि गर्नेछु। जसले यो हरिहरको स्तुति पढ्छ, त्यो मानिस हाम्रो प्रिय बन्छ र सबै पापबाट मुक्त हुन्छ। धनधान्य, कीर्ति, आयु पाएर सम्पूर्ण पीडाबाट मुक्त भई सिद्ध नहुने कामलाई पनि सिद्ध गर्न सक्छ, त्यसका सबै शत्रुहरू नाश हुनेछन्, ब्राह्मण भई वेदज्ञ भएर आफूलाई इच्छा लागेको फल भोग्नेछ र चतुर्वर्गको फल प्राप्त गरेर अन्त्यमा ममा नै विलीन हुनेछ ॥४६-५०½॥

---

८. श्रुवरूपाय, इति न.सं.पु.पाठः। ९. कृत्य, इति न.सं.पु.पाठः।
१०. स्तुतिभिर्ब्रह्म, इति न.सं.पु.पाठः। ११. विमर्द्यताम्, इति न.सं.पु.पाठः। १२. विलिष्यति, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

समाकर्ण्य ततो धाता वचनं विष्णुभाषितम् ॥५१॥

मेने स्वमिति कर्तारं रोमाञ्चनः प्रहृष्टवान्। ततः ससर्ज्ज सर्वात्मा ओमित्येकाक्षरं परम् ॥५२॥

तस्मात् स्वरा अजायन्त[१३] मात्रा वर्णास्ततः परम्। व्याहृतिश्च महादेवी चतुर्विंशतिवर्णका[१४] ॥५३॥

जायते तत्पदं[१५] दिव्यं चतुःपादसमायुतम्। ततो नादाश्च छन्दांसि वषट्कारः प्रजायते ॥५४॥

ऋक्सामाथर्वयजुषोऽजायन्त श्रुतयस्तथा। विष्णुः ससर्ज्ज देवर्षीन् संसारस्थितिहेतवे ॥५५॥

नारायणो नरात्मा च मनसैवं पुरा मुने। सनच्च भगवानाद्यः सनकश्च महाविभुः ॥५६॥

सनातनश्च विश्वात्मा सनन्दनो वरप्रदः। सनत्कुमार एवार्या ब्रह्मा च कपिलस्तथा ॥५७॥

एते योगिन आद्याश्च विष्णोर्मनसि सम्भवाः। धर्म्मिष्ठास्ते व्रतस्थाश्च मुनयो धर्म्मदेशिकाः ॥५८॥

एते विश्वं हि योगीशाः धारयन्ति चराचरम्। ततो ब्रह्मा ससर्जादौ सप्तर्षींश्च द्विजोत्तमान् ॥५९॥

मनसैव तदागस्त्य सर्वभूतोद्भवाय च। मरीचिं वरमत्रिं च पुलस्त्यं पुलहं क्रतुम् ॥६०॥

भृगुमङ्गिरसं चैवमेतान् मुनिवरान् मुने। जैगीषव्यं मनुं भूयश्चासितं देवलं तथा ॥६१॥

पितृंश्च सर्वभूतानि नृदेवासुरराक्षसान्[१६]। सप्तर्षिभ्यश्च तेभ्यो वै जज्ञिरे सचराचराः ॥६२॥

देवासुरास्सगन्धर्वाः सयक्षोरगराक्षसाः। किन्नरा गुह्यकाश्चैव विद्याधराप्सरोगणाः ॥६३॥

---

कार्तिक स्वामीले भन्नुभयो – विष्णुले भनेको कुरा सुनेर ब्रह्माजीले आफूलाई सृष्टिकर्ता सम्झिनुभयो र रोमाञ्चित हुँदै प्रसन्न हुनुभयो, अनि ब्रह्माजीले ॐ भन्ने सम्पूर्ण आत्माले युक्त भएको अक्षरको सृजना गर्नुभयो। त्यसपछि स्वरहरू पैदा भए। स्वरपछि मात्राहरू, मात्रापछि वर्णहरू र वर्णहरूपछि चौबीस अक्षरले युक्त भएकी महादेवी व्याहृति (गायत्री) पैदा भइन् ॥५१–५३॥

त्यसपछि चारै पाउले युक्त भएको तत्पदको सृजना भयो, अनि नादहरू पैदा भए, नादपछि छन्द र छन्दपछि वषट्कार पैदा भयो। वषट्कारपछि ऋग्वेद, यजुर्वेद, सामवेद र अथर्ववेद गरी चार श्रुतिहरू पैदा भए। संसारको स्थितिका लागि विष्णुले देवर्षिहरूको सृष्टि गर्नुभयो ॥५४–५५॥

हे अगस्त्य मुनि ! षडैश्वर्यशाली महाप्रभु भगवान् नारायणले मानिसको रूप भएका सनत्, सनक, सतातन, सनत्कुमारको सृजना गर्नुभयो। हे आर्य ! ब्रह्माजीले कपिल मुनिको पनि सृजना गर्नुभयो। यी धर्मात्मा, व्रत गर्ने, धर्मको उपदेश गर्ने र विष्णुको मनबाट उत्पन्न भएका प्रथम योगीहरू हुन्। यी योगीहरूले चराचर जगत्ले युक्त भएको सम्पूर्ण विश्वलाई धारण गर्दछन्। त्यसपछि पहिले ब्रह्माजीले ब्राह्मणश्रेष्ठ सप्तर्षिको सृष्टि गर्नुभयो ॥५६–५९॥

हे अगस्त्य मुनि ! त्यसपछि सम्पूर्ण प्राणीका सृष्टिका निमित्त मरीचि, अत्रि, पुलस्त्य, पुलह, क्रतु, भृगु, अङ्गिरा नाम गरेका मुनिहरू, जैगीषव्य, मनु, असित, देवल तथा पितृहरू, मानिस, देवता, असुर र राक्षसहरूको सृजना गर्नुभयो। उहाँले सप्तर्षिहरूबाट सम्पूर्ण चराचर जगत्को सृजना गराउनुभयो ॥६०–६२॥

हे अगस्त्य मुनि ! देवता, असुर, गन्धर्व, यक्ष, सर्प, राक्षस, किन्नर, गुह्यक, विद्याधर, अप्सरा, साध्य, वायु र पिशाच, यी सबै भगवान्बाट नै उत्पन्न भएका हुन् ॥६३½॥

---

१३. तस्मात्स्वराः प्रजायन्ते, इति न.सं.पु.पाठः।

१४. चतुर्विंशाक्षरात्मिका, इति न.सं.पु.पाठः।

१५. जायते तत्पदम्, इति न.सं.पु.पाठः।

१६. सर्वभूतानां नृदेवासुररक्षसाम्, इति न.सं.पु.पाठः।

साध्यानिलाः पिशाचाश्च एतेऽगस्त्य सुरोद्भवाः ।

अगस्त्य उवाच

देहिनां सर्व्वभूतानामुत्पत्तिश्च कथं भवेत् ॥६४॥

संसारसारदेहानां विना शक्तिं च सर्व्ववित् । शिवशक्त्यात्मकं प्रोक्तं जगच्च सचराचरम् ॥६५॥

इनि नः संशयो जातो विस्मयोऽत्र महान् भवेत् ।

स्कन्द उवाच

स्थित्युत्पत्तिनिरोधानां देवानां चरितं हितम् ॥६६॥

संशयश्च न कर्त्तव्यो विलक्षणं[१६] विशेषतः । सर्वभूतोपकारस्य ब्रह्मणा श्रुतिभिः स्तुतम् ॥६७॥

देवस्य चरितं वक्ष्ये तन्मे निगदतः शृणु । ब्रह्मणोऽगस्त्य कल्पान्ते निःशेषान्ते सुरद्रुहाम् ॥६८॥

परं शिवं हरिर्दध्यौ लोकजननहेतुना । सर्गञ्चिन्तयतो विष्णोर्वक्रात्प्रनिःसृतः पुरा ॥६९॥

पुरुषः खलु देवांशः किं करोमीत्युपस्थितः । संसृजात्मानमित्युक्त्वा तिरोधानं गतोऽच्युतः ॥७०॥

ततः स पुरुषः स्रष्टुं ध्यातवान् हि शरीरिणः । पुरुषस्य ततोऽगस्त्य ध्यानवतस्ततस्तदा ॥७१॥

अजायत जलं तस्माद् भूमिरजायत[१७] पुनः । ततः शैला व्यजायन्त तस्मादोषधयस्तथा ॥७२॥

चन्द्रमा मनसो जातो नेत्रात्[१८] सूर्य्यो व्यजायत । श्रोत्राभ्यां जनितो वायुर्मुखादग्निरजायत ॥७३॥

नासाभ्यां जनितं व्योम आसीद् द्यौः शीर्षमव्ययम् । दशदिशश्च पादाग्रं दक्षाङ्गुष्ठादजस्य वै ॥७४॥

अजायत घटोद्भूत दक्षो नाम प्रजापतिः । वामाङ्गुष्ठाच्च हस्तस्य दाक्षायणी व्यजायत ॥७५॥

भार्या दक्षस्य जानीहि चास्याः कन्या अजायत । ब्राह्मणास्तस्य मूर्ध्नो वै बाहुभ्यां क्षत्रियाः पुनः ॥७६॥

ऊरूभ्यां च तथा वैश्याः शूद्राः पद्भ्यां तथाविधाः ।

---

अगस्त्यले भन्नुभयो – हे सर्वज्ञ ! देहधारी सम्पूर्ण प्राणीहरूको उत्पत्ति कसरी भएको थियो ? यो सम्पूर्ण चराचर जगत् शिवशक्तिले सम्पन्न छ भनेर भनिएको छ। शक्तिविना सम्पूर्ण संसारका प्राणीहरूको सृष्टि कसरी भयो ? यस विषयमा मलाई सन्देह हुनुका साथै आश्चर्य पनि लागेको छ ॥६४–६५½॥

कार्तिक स्वामीले भन्नुभयो – सृष्टि, स्थिति र प्रलय यी तीन देवताका मुख्य चरित्र हुन् । यस विषयमा शङ्का गर्ने र आश्चर्य मान्ने ठाउँ छैन, वास्तवमा यो चरित्र विलक्षण छ। हे अगस्त्य मुनि ! कल्पको अन्त्यमा सम्पूर्ण देवताहरूको नाश भएपछि ब्रह्माजीद्वारा वेदहरूका माध्यमबाट स्तुति गरिएको र सम्पूर्ण प्राणीहरूको कल्याण गर्ने भगवान्को चरित्र म बताउँछु, सुन्नुहोस् ॥६६–६८॥

विष्णुले संसारको सृष्टि गर्न शिवजीको ध्यान गर्नुभयो । उहाँ सृष्टि गर्ने विचारले विष्णुको मुखबाट निस्कनुभएको थियो । त्यसपछि देवताको अंश लिएर जन्मनुभएका ती पुरुषले के गरौं ? भनेर उपस्थित भई भन्नुभयो । अनि भगवान् विष्णुले आत्माको सृजना गर्नुहोस् भनेर अन्तर्धान हुनुभयो । ती पुरुषले पनि प्राणीहरूका सृष्टिका निमित्त ध्यान गरे । त्यसबेला पानीको सृष्टि भयो । पानीबाट भूमि पैदा भयो, भूमिबाट पहाडहरू जन्मिए, पहाडबाट औषधिहरू उत्पन्न भए। मनबाट चन्द्रमा, आँखाबाट सूर्य, कानबाट वायु, मुखबाट अग्नि, नाकबाट आकाश र शिरबाट स्वर्गको उत्पत्ति भयो। ब्रह्माजीको दाहिने औंठाबाट दश दिशा र गोडाका अग्रभाग पैदा भए ॥६९–७४॥

हे अगस्त्य मुनि ! त्यसपछि दक्ष नामका प्रजापति उत्पन्न भए। तिनको हातको बायाँ औंठाबाट दाक्षायणी पैदा भइन् र ती दक्ष प्रजापतिकी पत्नी हुन् भन्ने बुझ । तिनबाट कन्या जन्मिइन् । उक्त पुरुषका शिरबाट ब्राह्मणहरू जन्मिए, हातबाट क्षत्रियहरू पैदा भए, तिघ्राबाट वैश्यहरू जन्मिए र गोडाबाट शूद्रहरू पैदा भए ॥७५–७६॥

---

१६. कर्तव्य अद्भुतं च, इति न.सं.पु.पाठः ।
१७. सलिलं जायते तस्माद्भूमिः प्रजायते, इति न.सं.पु.पाठः ।
१८. जातश्चक्ष्वोः, इति न.सं.पु.पाठः ।

नदादिमृत्तिकाः सर्व्वाः पूता भवन्ति भूतले। तज्जलानि च सर्वाणि तीर्थान्येव न संशयः ॥७७॥
ततो दाक्षयाणी धीर षष्टिकन्या अजीजनत्। प्रददौ दश धर्म्माय कश्यपाय त्रयोदश ॥७८॥
सोमाय विंशतिं सप्तसहितां मनवे ददौ। त्रयोदश सतीमेकां शङ्कराय महात्मने[१९] ॥७९॥
अदित्यां जज्ञिरे देवाः भार्य्यायां कश्यपस्य वै। इन्द्रोपेन्द्रादयो देवाः कोटिकोटिसहस्रशः ॥८०॥
द्वितीयायाञ्च भार्यायां कश्यपस्य महात्मनः। दित्याञ्च जज्ञिरे दैत्या महाशूरा महाबलाः ॥८१॥
हिरण्यकशिपुर्नाम हिरण्याक्षस्तथा पुनः। शुम्भस्तथा निशुम्भश्च अन्धकश्च महासुराः ॥८२॥
एतेषां देवदैत्यानां कोटिकोटिसुरासुराः। अजायन्त महाप्राज्ञ सुतास्तीव्रपराक्रमाः ॥८३॥
देवानाञ्च सुराणाञ्च कालान्ते च परस्परम्। विरोधश्च महानासीद् मिथो भृशं जयैषिणाम् ॥८४॥
दुर्वासोनाम्न आर्य्यस्य शापात्तेषामभूद् द्विज। ततः प्रभृतिरन्येषां विरोधश्चापराधतः ॥८५॥
हिमवति वरशैले वाञ्छितार्थप्रदे ते ह्यनुपमफललाभा देवदेवप्रसादात्।
अतिसुललितलोकान् प्राप्नुयुर्देवदैत्या द्विजवर तव हार्दात्ते मयोक्तो हि सर्गः[२०] ॥८६॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे लोकसर्गो नाम चतुर्थोऽध्यायः ॥४॥

---

सबै किसिमका सृष्टिको परमाधार पृथ्वीमा भएका नद, नदी, खोल्सा आदिको सम्पूर्ण माटो अत्यन्त पवित्र हुन्छ। तिनीहरूको सबै पानी तीर्थ नै हो, यसमा शङ्का छैन ॥७७॥

त्यसपछि दाक्षायणीले साठीवटी कन्या जन्माइन्। दक्ष प्रजापतिले तीमध्ये दशवटी कन्या धर्मलाई, तेह्रवटी कन्या कश्यपलाई, सत्ताईसवटी कन्या चन्द्रमालाई, तेह्रवटी कन्या मनुलाई र एउटी सती नाम गरेकी कन्या महात्मा शङ्करलाई प्रदान गरे ॥७८-७९॥

कश्यपकी पत्नी अदितिबाट इन्द्र, उपेन्द्र आदि नाम गरिएका करोडौं-करोड देवताहरू जन्मिए। महात्मा कश्यपकी अर्को पत्नी दितिबाट अत्यन्त पराक्रमी र बलिया दैत्यहरू उत्पन्न भए। ती हिरण्यकशिपु, हिरण्याक्ष, शुम्भ, निशुम्भ र अन्धक नाम गरेका दैत्यहरू थिए। हे महाप्राज्ञ ! यिनै देवता तथा दैत्यबाट अत्यन्त पराक्रमी करोडौं-करोड देवता तथा राक्षसका छोराहरू जन्मिए। समय-समयमा जित्ने इच्छाले देवता र राक्षसहरूको परस्परमा अत्यन्त ठूलो विरोध थियो ॥८०-८४॥

प्रारम्भमा दुर्वासा नाम गरेका ऋषिको सरापले गर्दा तिनीहरूका बीचमा वैरभावको स्थिति सिर्जना भयो। त्यसै समयदेखि अरू देवता र राक्षसहरूको बीचमा पनि अपराधका कारणले शत्रुता भएको हो। ती देवता र दैत्यहरूले आफ्नो अभिलाषा पूर्ण गरिदिने हिमालय नाम गरेको श्रेष्ठ पर्वतमा भगवान् शङ्करको अनुग्रहबाट अत्यन्त उत्तम फल प्राप्त गरे। हे द्विजवर ! मैले तपाईंमाथि प्रेम गरी सबै सृष्टिको विषयमा बताएँ ॥८५-८६॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गत हिमवत्खण्डमा लोकसर्गनामक चतुर्थ अध्याय पूर्ण भयो।

---

१९. सप्तविंश च सोमाय मनवे च त्रयोदश।
सतीमेकां ददौ दक्षः शंकराय महात्मने ॥, इति न.सं.पु.पाठः।

२०. मयोक्तं हि सर्गम्, इति न.सं.पु.पाठः।

# पञ्चमोऽध्यायः

पातालचर्चा

अगस्त्य उवाच

पातालानां प्रमाणं यत्कथं स्वर्णाचलो धृतः[1]। बलिनः के च सप्तानां धारकास्तेषु वासिनः ॥१॥
वरेण तोषितः केन हिमवान् भूधरेश्वरः। विवाहिता कथं कन्या वद कस्यात्मजा प्रभो ॥२॥

स्कन्द उवाच

शृणुध्वमभिधास्यामि मणिमयेऽचलोत्तमे। पुरेशेन यदुक्तं मे तत्सर्वं निखिलेन च ॥३॥
कोटियोजनविस्तारं तदर्धञ्च समुच्छ्रितम्। त्वगस्थिसंवृतं देहं कूर्मरूपं दधार सः ॥४॥
तस्योपरि वराहोऽसौ स्थितो महाकालेश्वरः। स्थितये भुवनानाञ्च द्विसप्तानां घटोद्भव ॥५॥
तस्य पृष्ठे महापद्मे कोटियोजनविस्तृते। सकेशरे महच्छुभ्रे कर्णिकायाञ्च भास्वति ॥६॥
आब्रह्मलोकपर्यन्तं स्थापयेन्मेरुमात्मभूः। दिग्गजैश्च समायुक्तं सहस्रैर्योजनैर्मुने ॥७॥
तत्प्रमाणैश्चतुर्भिश्च चतुर्दिक्षु क्रमात्पुनः। भुवनानि द्विसप्तानि धारयन्तं महोज्ज्वलम् ॥८॥
तेषां मध्ये स्थितो गाढं जम्बूद्वीपः सपर्वतः। प्रमाणं तस्य पूर्वोक्तं शेषाणां च वदाम्यहम् ॥९॥
द्वीपप्रान्ते च शेषाहिवलयाकृतिशोभनम्। अधोभागे स्थितं नित्यं पातालं नाम सप्तमम्[2] ॥१०॥
पद्माकारं सकिञ्जल्कं ध्वान्ते रत्नमहोज्ज्वलम्। चतुर्दिक्षु स्थितं व्याप्य रत्नसानोः सुशोभनम् ॥११॥
योजनानाञ्च कोटीनां तत्पञ्चाशत्प्रमाणतः। पातालस्य च विस्तारो दशलक्षं समुच्छ्रितः ॥१२॥
वासुकिस्तत्र नागेन्द्रो वसन्नित्यं गणैः सह। पूजयंश्च महेशानं विराजते निरन्तरम् ॥१३॥

---

अध्याय- ५

पातालको वर्णन

अगस्त्यले भन्नुभयो – हे प्रभो ! पातालको प्रमाण कति छ ? सुमेरु पर्वत कसरी धारण गरियो ? सातवटै लोकलाई धारण गर्ने को-को छन् ? त्यसमा बस्ने प्राणीहरू को हुन् ? हिमालय पर्वतलाई वर दिएर कसले सन्तुष्ट गरायो ? हिमालयको विवाह कसकी छोरीसित कसरी भयो ? यी सबै कुरा भन्नुहोस् ॥१-२॥

कार्तिक स्वामीले भन्नुभयो – मणिले बनेको पर्वतमा भगवान् शिवले मलाई पहिले जे कुरा बताउनुभएको थियो, त्यो यथार्थ सुन्नुहोस्, म त्यो सबै बताउँछु। भगवान् विष्णुले करोड योजन फैलावट र त्यसको आधा उचाइ भएको छाला र हाडले युक्त शरीर भएको कछुवाको रूप धारण गर्नुभयो ॥३-६॥

हे अगस्त्य मुनि ! त्यस कछुवामाथि चौध भुवनको व्यवस्थाका लागि महाकालेश्वर बस्नुभयो। करोडौं योजन फैलिएको, परागले युक्त, अत्यन्त सेतो तथा चम्किलो महापद्म गट्टामा ब्रह्माजीले ब्रह्मलोकसम्म पुगेको सुमेरु पर्वतको स्थापना गर्नुभयो। हजार योजन फैलिएको, दिग्गजले युक्त चार दिशामा चौध भुवनलाई धारण गर्ने अत्यन्त उज्यालो सुमेरु पर्वत रहेको छ ॥७-८॥

ती दिशाहरूको बीचमा पर्वतले सहित भएको जम्बूद्वीप छ। त्यसको प्रमाण मैले पहिले नै भनिसकेको छु। अब अरूको प्रमाण म बताउँछु। द्वीपको अन्त्यमा शेष अवतारको गहना भएर रहेको पाताल नाम गरेको भुवन छ। त्यो सबैभन्दा तल्लो भागमा रहेको छ। परागसहित कमलको आकार भएको, अन्धकारमा रत्नले गर्दा अत्यन्त उज्यालो भएर चारैदिशामा फैलिएर बसेको पाताललोक छ। यो पचास करोड योजन विस्तृत र दशलाख योजन उचाइको छ। त्यस लोकमा आफ्ना गणहरूसहित नागराज वासुकि नित्य भगवान् शिवलाई पूजा गरेर बस्नुहुन्छ ॥९-१३॥

---

१. स्वर्णाचलं धृतम्, इति न.सं.पु.पाठः। २. स्थितोऽजस्रं पातालं नाम सप्तमः, इति न.सं.पु.पाठः।

सितेन देहेन विराजतेऽनिशं सुरत्नहारार्चितकन्धरोत्तमः।
सहस्रभोगाढ्यफणीन्द्रवासुकिः शिवार्चनासक्तकरारविन्दकः ॥१४॥
दधार पृथ्वीं वलयाकृतिर्वै सोऽहीश्वरः प्रान्तरतश्च तस्याः।
सहस्रभोगैर्ललजिह्वतीक्ष्णैः सुपुण्यपापोच्छ्वसितोत्तमाङ्गैः ॥१५॥
धारयंश्च महीं सर्वां सभामध्ये विराजते। यदा देवद्विजान् गाश्च नार्चयन्तीह मानवाः ॥१६॥
गुर्वी च मेदिनी पापातिशयेन भवेद् भृशम्[३]। तद्भारेण समाक्रान्तो बहूच्छ्वसिति वासुकिः ॥१७॥
सशैलाया हि तच्छ्वासाद् भूमेः कम्पः प्रजायते[४]। शंसति च तदा नृणां कम्पः स्वल्पायुषस्ततः ॥१८॥
पूजयन्ति च ये[५] मर्त्या दीर्घायुषो न संशयः। तत्र चाधिपतिर्दैत्यो वैरोचनिर्महाबली ॥१९॥
राजते विष्णुना युक्तो दानवैः सह नित्यशः। विप्रदोषैस्तथा श्राद्धे वाक्यदोषैरमेध्यतः ॥२०॥
पितृभ्यो यन्नरैर्दत्तं तत्सर्वं हरते बलिः। पूजयंश्च महादेवं मुदा युक्तो वरोत्तमम् ॥२१॥
हिमवत्पर्वते लब्ध्वा शङ्करस्य प्रसादतः। ततो रसातलं नाम शिलासङ्घातभूमिकम् ॥२२॥
श्वेतकान्तिसमायुक्तं भवेद्रत्नांशुभिर्मुने। कोटीनां योजनानाञ्च तत्पूर्वोक्तं प्रमाणतः ॥२३॥
रसातलस्य विस्तारः कोटिलक्षसमुच्छ्रितः[६]। महापद्मश्च नागेन्द्रो बहुनागैः सुसेवितः ॥२४॥
सितरत्नमये गेहे वसत्यत्र[७] निरन्तरम्।
हेमाद्रिकान्त्युत्तमविग्रहो वै हारप्रभाकान्तिसुसुन्दरश्च।
शूलाब्जशङ्खाङ्कितमस्तकोऽसौ स्त्रीभिस्त्रिशीर्षाभिरलं विभाति[८] ॥२५॥

---

सेतो शरीर भएका, विभिन्न रत्नका हारले घाँटी सिँगारिएका, हजारौं फणाले युक्त भएका र सधैं शिवजीको पूजामा तत्पर वासुकि नाग त्यहाँ विराजमान हुनुहुन्छ। हजारौं शरीर र चञ्चल जिब्राले युक्त कुण्डलाकार शेषनागले उहाँको नजिकै बसेर पृथ्वीलाई पुण्य र पापको श्वास लिँदै शिरले धारण गर्नुभएको छ। सम्पूर्ण पृथ्वीलाई धारण गरेर सभाको बीचमा उहाँ अत्यन्त शोभायमान देखिनुहुन्छ ॥१४-१५॥

जब मानिसहरू देवता, ब्राह्मण र गाईको सेवा गर्दैनन् त्यसबेला पृथ्वी पापले गर्दा अत्यन्त गह्रुङ्गी हुन्छिन्। उनको भारले थिचिएर वासुकि नागले लामो श्वास फेर्नुहुन्छ। त्यसबाट पर्वतसहित सम्पूर्ण पृथ्वी काँप्न थाल्छिन्। यस्तो कम्पले प्राणीहरू थोरै आयु भएका छन् भन्ने जनाउँछ। अथवा जुन मानिसले देवता आदिको पूजा गर्छन् ती मानिसहरू दीर्घायु हुन्छन्, यसमा शङ्का छैन ॥१६-१८॥

त्यहाँ विष्णु र दानवका साथ सधैं अत्यन्त बलिया दैत्यका राजा वैरोचनि अर्थात् बलि बस्दछन्। श्राद्धमा ब्राह्मणका दोषले अथवा अशुद्ध वाक्य उच्चारण गरेका दोषले अथवा अपवित्रताले गर्दा माानिसहरूले पितृलाई दिएको अन्न बलिले हरण गर्दछन्। यदि कुनै मानिसले हिमालय पर्वतमा गएर भगवान् शिवको पूजा गर्छ भने त्यो व्यक्ति शिवजीको अनुग्रह पाएर आनन्दसित बस्न पाउँछ ॥१९-२१॥

त्यसपछि रसातल नाम गरेको भुवन छ। ढुङ्गै-ढुङ्गाको खातले त्यसको भूमि बनेको छ। रत्नका किरणले गर्दा यो सेतो कान्तिले उज्ज्वल देखिन्छ। यसको विस्तार करोडौं योजन छ भनी पहिले नै यसको प्रमाण दिइएको छ। यो करोडौं लाखौं योजन अग्लो छ। यस लोकमा महापद्म नाम गरेका नागराज नित्य अनेक नागहरूद्वारा सुसेवित भएर सेतो रत्नले बनेको घरमा बस्नुहुन्छ। सुमेरु पर्वतको कान्तिजस्तै अत्यन्त सुन्दर नागराज महापद्मको शरीर गलामा लगाएका गहनाको कान्तिले झनै सुन्दर भएको छ। त्रिशूल, कमल र शङ्खयुक्त तीन शिर भएका ती नागराज आफ्ना पत्नीहरूका साथ विराजमान हुनुहुन्छ ॥२२-२५॥

---

३. मेदिनी च गुरु पापादतिशयो भवेद् भृशम्, इति न.सं.पु.पाठः।
४. सञ्जायते हि तच्छ्वासाद्भूमिकम्पः सपर्वतः, इति न.सं.पु.पाठः
५. पूजयन्त्यथवा, इति न.सं.पु.पाठः।
६. विस्तारं कोटिलक्षसमुच्छ्रितम्, इति न.सं.पु.पाठः।
७. अवसच्च, इति न.सं.पु.पाठः।
८. स्त्रिभिस्त्रिशीर्षैः प्रविराजमानः, इति न.सं.पु.पाठः।

वलयाकृतिनागेन्द्रो दधार स्वफणै रसाम्। महापद्मो महानागो हरपादार्चने रतः ॥२६॥
पातालं धारयंस्तत्र पूजयति महेश्वरम्। यदा धर्मोपवासांश्च न कुर्वन्ति महीतले ॥२७॥
गुरुता च भवेद् भूमेर्गाढपापादनारतम्। तद्भारेण भृशं क्रान्तः प्रोच्छ्वसिति स नागराट् ॥२८॥
नागोच्छ्वासोद्गताद्वायोर्भूमिकम्पः प्रजायते। नृणां शंसति तत्कम्पो नानारोगांस्तदा पुनः ॥२९॥
पूजयन्ति महापद्मं व्याधिनाशाय सज्जनाः[९]। सुलोमा तत्र दैत्येन्द्रः सुवर्णाभपुरे शुभे ॥३०॥
विराजतेऽसुरैः सार्धं पूजयन्नीश्वरं तदा। केशदूषितमन्नञ्च वेलातीते[१०] च भोजनम् ॥३१॥
अश्रद्धया च यद्दत्तं तत्सर्वं भुञ्जतेऽसुराः। हिमवच्छिखरे पुण्ये वरं लेभे महासुरः ॥३२॥
दिव्यवर्षसहस्रेण तेप ईशप्रादतः। तदधः सुतलं नाम पीताभं नागभूषितम् ॥३३॥
पीतरत्नमयं दिव्यं पीतरत्नचमत्कृतम्[११]। पञ्चाशत्कोटिमानेन योजनानां क्रमात्पुनः ॥३४॥
दशलक्षसमुत्सेधं योजनं च तथाविधम्। बहुनागगणैः सार्धं भवने तत्र शोभने ॥३५॥
तक्षको भासते नागो धारयंश्च रसातलम्।
सुपीतदेहेन सुभोगभोगिभिर्विराजमानो हि गणैश्च तक्षकः।
रत्नाभसुस्वस्तिकमस्तकोपमश्चाहीन्द्रकन्यागणसंयुतोऽनिशम् ॥३६॥
नागराट् तक्षकः श्रीमान् नागकोट्या समन्वितः। भगवन्तं महादेवं स्तौति नित्यं महोत्सवैः[१२] ॥३७॥

---

कुण्डलको जस्तो आकार भएका नागराजले आफ्ना फणामा पृथ्वीलाई धारण गर्नुभएको छ। महापद्म नाम गरेका शिवभक्त महानाग पातललाई शिरमा धारण गरी महेश्वरको नित्य पूजन गर्नुहुन्छ। जब पृथ्वीमा मानिसहरूले धर्म, उपवास आदि गर्दैनन्, त्यसले गर्दा पृथ्वी पापैपापले भारवती हुन्छिन्। तिनको भारले थिचिएर नागका राजा महापद्मले लामो सास फेर्नुहुन्छ। नागको सासबाट आएको वायुले भूकम्प पैदा हुन्छ। त्यस कम्पले मानिसहरूका निमित्त विभिन्न किसिमका रोगहरू फैलिने सङ्केत मिल्दछ। मानिसहरू विभिन्न रोगलाई नाश गर्न पूजा–आजा गर्छन् ॥२६–२९॥

सुवर्णमय कान्तिले युक्त त्यस सुन्दर सहरमा असुरहरूका साथ सुलोमा नाग गरेका दैत्यका राजा ईश्वरको पूजा गरेर बस्नुभएको छ। कपालका रौंले दूषित भएको अन्न, समय बितेपछि खाएको भोजन र श्रद्धाविना दिइएका वस्तुलाई उहाँले खानुहुन्छ। हिमालयको पवित्र शिखरमा दिव्य हजार वर्षसम्म ती राक्षसले तपस्या गरेर शिवजीको अनुग्रहबाट वर पाउनुभएको छ ॥३०–३२॥

त्यस भुवनभन्दा तल नागद्वारा सुशोभित पहेँला रत्नहरूले युक्त दिव्य पहेँलो तेज भएको सुतल नाम गरेको लोक छ। यसको पचास करोड योजन फैलावट र दशलाख योजन उचाइ छ। त्यस भुवनको सुन्दर गृहमा रसातललाई धारण गरिरहेका तक्षक नाग अनेकौं नागहरूका साथ विराजमान हुनुभएको छ। पहेंलो वर्णको शरीरले युक्त भएका तक्षक नाग सुन्दर शरीरधारी गणहरूका साथ विराजमान हुनुहुन्छ। रत्नका किरणमय स्वस्तिक चिह्नले युक्त उहाँको शिर अनुपमेय छ। उहाँ सधैं नागकन्याका गणहरूका साथ बस्नुहुन्छ। करोडौं नागले युक्त भएका ऐश्वर्यशाली नागराज तक्षक सधैं ठूलो उत्सवका साथ महादेवको स्तुति गर्नुहुन्छ ॥३३–३७॥

---

९. प्रकुर्वन्ति नरांश्च व्याधिनाशप्रसूचकाः, इति न.सं.पु.पाठः।
१०. केशदूषणमन्नञ्च वेलातीते, इति न.सं.पु.पाठः।
११. पीतरत्नसुतेजसम्, इति न.सं.पु.पाठः।
१२. तत्र नित्यं महादेवं प्रस्तूयति महोत्सवैः, इति न.सं.पु.पाठः।

यदा दानानि कुर्वन्ति न मानवा महीतले। अतिभारा भवेत्क्षोणी स्पर्शात् पापात्मनां कृशा[१३] ॥३८॥
तद्भारेण दृढक्रान्तः समुच्छ्वसिति[१४] तक्षकः। तच्छ्वासोद्गतवायोश्च भूमिकम्पः प्रजायते ॥३९॥
नृणां शंसति तत्कम्पो दारिद्र्यञ्च तदा पुनः। नराः स्वस्ति विधातारो[१५] लक्ष्मीवन्तः प्रसूचिताः ॥४०॥
तस्य चाधिपतिर्दैत्यः कालनेमिर्महाबलः। तप्तचामीकरप्रख्ये भवने हि विराजते ॥४१॥
बहुकोट्यसुरैर्युक्तः कोटिकोटिसुसेवितः। रत्नकोटिसुदिव्यायां[१६] संसदि प्रविराजते ॥४२॥
अप्रक्षाल्य करौ पादौ करोति कर्म भोजनम्। मर्त्यो गृह्णाति तत्सर्वं कालनेमिः सुनिश्चितम् ॥४३॥
दिव्यवर्षसहस्रेण तपसेशप्रसादतः। लेभे[१७] वरं महादैत्यः पूजयंश्च महेश्वरम् ॥४४॥
ततस्तलातलं नाम शर्कराचितभूमिकम्। हरिताभदिगुद्योतं मरकतमणिप्रभम् ॥४५॥
तलातलस्य विस्तारः पञ्चाशत्कोटिमानतः। दशलक्षसमुत्सेधो दिव्यपुररसायुतः ॥४६॥
महामरकतैर्दीप्ते भवने दिव्यशोभने। कोटिनागगणैः सार्धं कर्कोटको विराजते ॥४७॥
हेमाद्रीशाद्वरं प्राप्य महाबलपराक्रमः। सुतलीयामिलां दध्रे[१८] शिरसा बहुभारभृत् ॥४८॥
कृष्णाभदेहेन विराजमानः कर्कोटकोऽसौ लिलिहन्द्विजिह्वः।
कण्ठाप्तरेखात्रयभूषितोऽसौ द्रंष्ट्राकरालाङ्कितनागकन्यः ॥४९॥
कर्कोटको महानागो विषदर्पबलान्वितः। सम्पूजयति वै तत्र सदाकालं सदाशिवम् ॥५०॥

---

जब मानिसहरू पृथ्वीतलमा दान गर्दैनन्, त्यसबेला पापीहरूको स्पर्शले गर्दा पृथ्वी अत्यन्त भारवती बन्दछिन्। तिनको भारले थिचिएका तक्षक नाग लामो श्वास फेर्दछन्। उनको श्वासबाट निस्किएका वायुद्वारा भूकम्प आउँछ। त्यस भूकम्पले मानिसहरू दरिद्र हुन्छन् भन्ने कुराको सूचना दिन्छ। यदि ती मानिसहरूले पूजा गरे भने तिनीहरू ऐश्वर्य र धनधान्यले सम्पन्न हुन्छन् ॥३८-४०॥

त्यहाँ कालनेमि नाम गरेको बलियो दैत्य सुवर्णमय भवनमा विराजमान भएको छ। धेरै राक्षसले युक्त भएको, करोडौं राक्षसहरूद्वारा सुसेवित त्यो दैत्य विभिन्न रत्नहरूले बनेको दिव्य सभामा सुशोभित भएको छ। जुन मानिसले हातगोडा नधोईकन भोजन गर्दछ त्यसले गरेको भोजन कालनेमि नाम गरेको राक्षसले ग्रहण गर्दछ। त्यस महादैत्यले दिव्य हजार वर्षसम्म महेश्वरको पूजा गरेर उहाँबाट वर पाएको छ ॥४१-४४॥

त्यसभन्दा माथि तलातल नाम गरेको भुवन छ। त्यहाँको भूमिमा सधैं शिवजीको पूजा हुन्छ। हरियो वर्ण भएका कान्तिहरूले सम्पूर्ण दिशा चम्किएका छन्। मरकत मणिको जस्तै कान्ति छ। यो भुवन पचास करोड फैलावट र दशलाख उचाइ भएको छ। यसमा दिव्य सहरले युक्त भएका भूभागहरू छन्। यसका मरकतमणिले चम्किएका सुन्दर भवनमा करोडौं नागहरूका साथ कर्कोटक नाम भएका नागराज विराजमान हुनुहुन्छ ॥४५-४७॥

अत्यन्त बलिया, पराक्रमी र धेरै भार बोक्न सक्ने कर्कोटक नाग भगवान् शिवजीबाट वर प्राप्त गरेर सुतलनामक भुवनलाई शिरले धारण गरिरहनुभएको छ। कर्कोटक नाग कालो शरीरले विराजमान हुनुहुन्छ। दुई जिब्रा भएका कर्कोटक लिब्रि-लिब्रि गरिरहनुभएको छ। उहाँ घाँटीमा तीनवटा रेखाले विभूषित हुनुहुन्छ अनि डरलाग्दा दाँत भएका कर्कोटक नागकन्याका साथमा रहनुभएको छ। विषको अभिमान र बलले युक्त भएका कर्कोटक नाम गरेका महानाग त्यहाँ सधैं भगवान् सदाशिवलाई पूजा गर्नुहुन्छ ॥४८-५०॥

---

१३. तेषां पापात्मनां स्पृशात्, इति न.सं.पु.पाठः।
१४. उच्छ्वसति च, इति न.सं.पु.पाठः।
१५. कर्तारश्चेन्नरास्तानि, इति न.सं.पु.पाठः।
१६. नानारत्नमये दिव्ये, इति न.सं.पु.पाठः।
१७. लब्ध्वा, इति न.सं.पु.पाठः।
१८. दधार सुतलं भूमिं, इति न.सं.पु.पाठः।

स्नानयज्ञोत्सवैदानैर्वर्जिता मानवा यदि। गाढभारा भवेत्क्षोणी तत्पापैश्च प्रलेपिताः ॥५१॥
तद्भारेण पराक्रान्तः कर्कोटको हि नागराट्। उच्छ्वसिति महोच्छ्वासं सर्वसत्त्वभयङ्करम् ॥५२॥
तच्छ्वासोद्गतवायोश्च भूमिकम्पः प्रजायते। शुभाशुभानि सत्त्वानां शंसते स[१९] च वेपथुः ॥५३॥
तथेतिभीत्यनावृष्टीर्दुर्भिक्षादीन् प्रशंसति[२०]। यदि मर्त्यकृतं तत्तत् विपरीतं भवेत् ध्रुवम्[२१] ॥५४॥
बहुरत्नमये दिव्ये भवने चित्रशोभिते। हिरण्याक्षोऽसुरैः सार्धं विराजते हि तत्र वै ॥५५॥
हिरण्यकशिपुश्चैव सर्वदैत्यपितामहः। नानारत्नमये गेहे विराजतेऽसुरैः समम् ॥५६॥
अधर्मोपार्जितार्थेन यद्धर्मः क्रियते नरैः। तत्सर्वञ्च प्रगृह्णाति हिरण्याक्षो महाबलः ॥५७॥
वरं लेभे[२२] महादेवाद्धिमालयनगोत्तमे। दिव्यवर्षसहस्रेण तपसा पूजयन् हरम् ॥५८॥
तदधो वितलं[२३] नाम पातालं रक्तभूतलम्। बहुरत्नकरैर्द्योतं पद्माकारं सदोत्सवम् ॥५९॥
वितलस्यैव विस्तारः पञ्चाशद्योजनात्मकः[२४]। दशलक्षसमुत्सेधं प्रान्तरं घटसम्भव ॥६०॥
विविध रत्नगेहैश्च नानाप्रभाकरोत्तमैः। दूरीकृत्य खलु ध्वान्तं विद्योतते निरन्तरम्[२५] ॥६१॥
शङ्खपालो महानागो बहुभृत्यैः समायुतः। विभाति सततं तत्र स्वरत्नैर्द्योतयन्दिशः ॥६२॥
सुकृष्णकान्त्या रुरुचे स ईश्वरः सुरत्नकान्त्यैकगलैकलेखया।
द्विजिह्वलेढी विषदर्पपौरुषश्चाहीन्द्रकन्याङ्कितवामविग्रहः ॥६३॥

---

यदि मानिसले पृथ्वीमा स्नान, यज्ञको उत्सव र दान गरेनन् भने पृथ्वी तिनीहरूको पापले लिप्त भएर भारवती बन्न पुग्छिन्। तिनीहरूको बोझले थिचिएका कर्कोटक नाग सबै प्राणीहरूलाई त्रास पैदा गराउने खालको सुस्केरा हाल्नुहुन्छ। त्यस सुस्केराबाट निस्किएको वायुले पृथ्वीमा कम्प पैदा हुन्छ। त्यस कम्पले प्राणीहरूको खराब र असल कुरा बताउँछ। त्यस्तै अनिकाल, सहकाल, अनावृष्टि आदिको विषयमा जानकारी दिन्छ, यसलाई ईति भनिन्छ। जसले शिवजीको पूजा गर्दछन्, तिनीहरूलाई सधैं त्यसको ठीक उल्टो फल अर्थात् शुभ हुन्छ ॥५१-५४॥

धेरै रत्नले युक्त भएको, चित्रैचित्रले सजिएको त्यस भुवनको सुन्दर भवनमा हिरण्याक्ष नाम गरेको दैत्य असुरहरूका साथ विराजमान भएको छ। सम्पूर्ण दैत्यहरूको पितामह हिरण्यकशिपु पनि विभिन्न रत्नले युक्त भएको त्यस भुवनमा असुरहरूका साथ सुशोभित भएको छ। जुन मानिसहरू अधर्मबाट कमाएको सम्पत्तिले धर्म गर्दछन्, त्यसको फल महाबली हिरण्याक्षले ग्रहण गर्दछ। यसले हिमालय नामक उत्तम पर्वतमा दिव्य एक हजार वर्षसम्म भगवान् शिवको पूजा गरी तपस्या गरेर वर प्राप्त गरेको थियो ॥५५-५८॥

त्यसभन्दा तल वितल नाम गरेको रातो भूभाग भएको पाताल छ। त्यो धेरै किरणले गर्दा चम्किलो छ। कमलको आकार भएको त्यस पातालमा सधैं उत्सव भइरहन्छ। हे अगस्त्य मुनि ! वितल पचास योजन फैलिएको र दश योजन उचाइ भएको भुवन हो। यो भुवन विभिन्न किसिमका रत्नका घरहरू र नानाथरी उत्कृष्ट किरणले गर्दा अँध्यारो हराएर रातदिन चहकिलो बन्न पुगेको छ। यसमा शङ्खपाल नाम गरिएका ठूला नाग आफ्ना रत्नहरूद्वारा दिशाहरूलाई प्रकाशित तुल्याउँदै अनेकौं भृत्यहरूका साथ विराजमान हुनुहुन्छ। ती नागराज सुन्दर कालो कान्तिले सुशोभित हुनुभएको छ। उहाँको गलामा एउटा रेखा छ। उहाँ दुई जिब्राले लिब्रि-लिब्रि गर्नुहुन्छ। विषको घमण्ड र पुरुषार्थले युक्त नागराज शङ्खपालको बायाँ शरीर सर्पराजकी कन्याको आलिङ्गनरूपी पासोले दृढ रूपमा बाँधिएको छ ॥५९-६३॥

---

१९. प्रशंसति, इति न.सं.पु.पाठः।
२०. तथेतीतीतनावृष्टीन्दुर्भिक्षांश्च प्रशंसति, इति न.सं.पु.पाठः।
२१. कर्तारो यदि तान्मर्त्या विपरीताश्च सर्वशः, इति न.सं.पु.पाठः।
२२. लब्धवरो, इति न.सं.पु.पाठः।
२३. नितलम्, इति न.सं.पु.पाठः।
२४. नितलस्यैव विस्तारं पञ्चाशद्योजनात्मकम्, इति न.सं.पु.पाठः।
२५. दूरङ्गतः खलु ध्वान्तो विद्योतवे ह्यहर्निशम्, इति न.सं.पु.पाठः।

शङ्खपालः श्रिया दीप्तः शिवपादाब्जपूजकः। चतुर्थीं धारयन् भूमिं समर्हीति महेश्वरम् ॥६४॥
यदा प्रजाः हेलयन्ति सुपर्वाणो नृपान् द्विजान्। अपहरन्ति गोभूमिं दानधर्मैर्विवर्जिताः ॥६५॥
तत्पापानि समुद्वोढुमसमर्था भवेन्मही। ततो गुरुतराऽगस्त्य सपातालाक्रमन्ती सा[२६] ॥६६॥
तद्भारेण दृढाक्रान्तः शङ्खपालः फणीश्वरः। उच्छ्वसिति महाशब्दं बहुभारव्यथोद्भवम् ॥६७॥
उच्छ्वासोद्गतवायोश्च भूमिकम्पः प्रजायते। भित्वा चतुर्थीं भूमिञ्च सर्वसत्त्वभयावहः ॥६८॥
नित्यं शंसति तत्कम्प उत्पातं क्षीणगोरसम्। अल्पसस्यं क्षितौ गुल्मं बुद्धिहीनञ्च जीवनम् ॥६९॥
यद्यर्चयन्ति तान्मान्यान् मानुषाः सुसुखैषिणः। ससस्या स्यान्मही क्षीरं बहु स्युः[२७] सुखसम्पदः ॥७०॥
तत्रैवाधिपतिर्दैत्यश्चानुह्रादो महाबली। बहुकोट्यसुरैः सार्धं सभामध्ये विराजते ॥७१॥
देवेभ्यश्च द्विजेभ्यश्च गोभ्योऽनिवेद्य भोजनम्। अन्नपानादिकं सर्वं खादन्ति ये नराधमाः ॥७२॥
तत्सर्वं च समादाय वितले च महीतलात्। अनुह्रादः सुखं भुक्ते नित्यं तत्र[२८] महासुरः ॥७३॥
हिमालये वरं लेभे दैत्य ईशप्रसादतः। दिव्यवर्षसहस्रेण तपसेशं समर्हयन् ॥७४॥
तदधश्च तलं नाम शुक्लक्षितिमहोज्ज्वलम्। चन्द्रार्ककान्तिरत्नाभं विद्योतते हि नित्यशः ॥७५॥
योजनानाञ्च कोटीनां पञ्चाशदस्य सा क्षितिः[२९]। दशलक्षसमुत्सेधं तलमेतत्प्रमाणतः[३०] ॥७६॥
श्वेतरत्नमये गेहे दिव्योपकरणैर्युते। पद्माख्यो नागराजोऽसौ बहुभृत्यैर्विराजते ॥७७॥
सुपुण्डरीकाभकलेवरो वभौ सुपुण्डरीकाक्षविलोलसृक्ककः।
सबिन्दुपञ्चास्यसुहारभूषितो भुजङ्गकन्याङ्कितदेहभीषणः ॥७८॥

---

शिवपूजक, ऐश्वर्यसम्पन्न शङ्खपाल यस चौँथो भुवनलाई धारण गर्दै महेश्वरको सेवा गर्नुहुन्छ। जब मानिसहरूले देवता, राजा र ब्राह्मणलाई हेला गर्नेछन्, दान, धर्म केही पनि गर्नेछैनन् र गाई तथा भूमिलाई पनि अपहरण गर्नेछन्। अनि पृथ्वी त्यो पाप सहन नसकी भारवती हुनेछिन्। त्यस भारले पाताललाई पनि थिच्नेछ। त्यसको भारले आक्रान्त शङ्खपाल ज्यादै पीडाले युक्त भएर ठूलो सुस्केरा हाल्नेछन्। उहाँको उच्छ्वासबाट उत्पन्न भएको वायुले सबै प्राणीहरूलाई त्रास फैलाउँदै चौँथो भुवनलाई पनि भेदन गर्दै भूकम्प पैदा हुनेछ। त्यस भूकम्पले पृथ्वीमा विभिन्न उत्पातहरू हुने, दही-दूधहरू घट्ने, अन्नमा कमी आउने र जीवन हीनबुद्धि भएको हुने कुरालाई सङ्केत गर्दछ। यदि सुखको कामना गर्ने मानिसहरूले सबै देवताहरूको पूजा गरे भने पृथ्वी धेरै अन्नले युक्त, धेरै दूधले सम्पन्न र सुखसम्पत्तिले भरिभराउ हुनेछिन् ॥६४-७०॥

त्यसै भुवनमा महाबली अनुह्राद नाम गरेका दैत्यका राजा करोडौँ राक्षसहरूका साथ सभाको बीचमा विराजमान भएका छन्। देवता, ब्राह्मण र गाईलाई अर्पण नगरीकन जुन मानिसले अन्नपान आदिको भोजन गर्दछ, त्यस्ता अधम मानिसहरूको सबै वस्तु पृथ्वीबाट लिएर वितलका अनुह्राद नाम गरेका राक्षसले आनन्दसित खान्छन्। यिनले दिव्य एक हजार वर्षसम्म हिमालयमा तपस्या गरेर शिवजीलाई खुसी तुल्याई उहाँकै अनुग्रहबाट वर पाएका थिए ॥७१-७४॥

त्यसभन्दा तल सेतो भूभाग भएको अत्यन्त उज्यालो तल नाम गरेको भुवन छ। चन्द्रमा र सूर्यको जस्तो तेज भएका रत्नका कान्तिले सधैँ सुशोभित भएको यो भुवन पचास करोड योजन फैलिएको र दशलाख योजन उचाइ भएको छ। यहाँ सेता रत्नहरूले बनेका र दिव्य उपकरणले युक्त सुन्दर भवनमा धेरै भृत्यहरूका साथ पद्म नाम भएका नागराज बस्नुहुन्छ। उहाँको शरीर सेता कमलको कान्तिजस्तो छ, आँखा सेतो कमलजस्ता उज्याला छन्, जिब्रो अत्यन्त चञ्चल छ, विन्दुसहित पाँचवटा मुखले सुशोभित पद्मनाग सुन्दर हारले विभूषित हुनुहुन्छ। सर्पकन्याहरूले बेरिएको र डरलाग्दो उहाँको स्वरूप छ ॥७५-७८॥

---

२६. सपातालाक्रमत्पुनः, इति न.सं.पु.पाठः।
२७. बहुक्षीरं मही सस्या भवेद्धि, इति न.सं.पु.पाठः।
२८. प्रभुनक्ति सुखं तत्र अनुह्रादो, इति न.सं.पु.पाठः।
२९. पञ्चाशत्क्रमशः क्षितिम्, इति न.सं.पु.पाठः।
३०. तलस्यैतत्प्रमाणतः, इति न.सं.पु.पाठः।

ख्यातः पद्मो महानागो हरपादार्चने रतः । विराजते तले मध्ये धारयन् पञ्चभूमिकम् ॥७९॥
यदा रुदन्ति विप्राश्च नृपात्तस्वा हृदा भयात्[31] । पतन्त्यश्रूणि तद्भूमौ तेन भारा भवेद्रसा ॥८०॥
अन्यायैर्यद् दण्डयन्ति[32] अविचार्य प्रजा नृपाः । तत्पापाच्च भवेद् भूमिर्गरिष्ठा च सपर्वताः ॥८१॥
अवमानात् पितुर्मातुर्गुरोश्चैव महात्मनः । तत्किल्विषाद् गरिष्ठा सा भवेत्क्षोणी समन्ततः ॥८२॥
तद्भारेण दृढाक्रान्तः पद्मनामा फणीश्वरः । उच्छ्वसिति महच्छब्दं गाढभारव्यथोदितम् ॥८३॥
नागोच्छ्वासोद्गताद्वायोर्भूमिकम्पः प्रजायते । पञ्चमं तत्तलं भित्त्वा[33] सर्वप्राणिविजृम्भकः ॥८४॥
नित्यं शंसति तत्कम्पः स्थानभ्रंशः प्रजाक्षयम् । राज्यनाशं महाकष्टं भविष्यतीति भूभुजाम् ॥८५॥
तस्याधिपोऽभवन्नित्यं प्रह्लादो दैत्यराट् सुखम् । बहुकोट्यसुरैः सार्द्धं रत्नालये विराजते ॥८६॥
असङ्कल्पेन धर्माणि यत्करोति नराधमः । तत्सर्वञ्च प्रगृह्णाति प्रह्लादो दानवेश्वरः ॥८७॥
लेभे वरं हिमाहारतपसा तोषयन् शिवम् । दिव्यवर्षसहस्रेण रुद्राराधनतत्परः ॥८८॥
ततो महातलो नाम सर्वाधो नलिनाकृतिः । पञ्चरङ्गमणिज्वालैर्विद्योतते हि नित्यशः ॥८९॥
योजनानाञ्च कोटीनां पञ्चाशत्क्रमशस्तथा । दशलक्षसमुत्सेधं मानतो हि महातलम्[34] ॥९०॥
तत्रानन्तः फणी स्वामी राजते सह पन्नगैः । सर्वरत्नमये गेहे देवासुरनमस्कृतः ॥९१॥
सुरत्नकान्त्याक्ततनूत्तमः फणी सुरक्तनेत्राधरसुन्दराननः ।
महोत्पलाब्जाङ्कितचारुमस्तकः सहस्रमूर्धा रमणीप्रियो बभौ ॥९२॥
अनन्तो नागराजेन्द्रः शिवपादार्चने रतः । दधार षष्ठपातालं पूजयन् शिवमव्ययम् ॥९३॥

---

पद्म नाम गरेका महानाग सधैँ शिवजीको पाऊमा पूजा गर्नुहुन्छ । पाँचौ भुवनलाई धारण गर्दै उहाँ तल नाम गरेको भुवनमा विराजमान हुनुभएको छ । जब राजाहरूले ब्राह्मणहरूको सम्पत्ति लुट्नेछन्, त्यसबेला उनीहरू रुन थाल्नेछन् । उनीहरूको आँसु भुइँमा खस्नेछ । त्यसको भारले पृथ्वी गह्रुङ्गी हुनेछिन् । यदि विचारै नगरी राजाहरूले अन्याय गरेर जनताहरूलाई दण्ड दिन्छन् भने त्यस पापले पर्वतसहितकी भूमि बोझिली बन्न पुग्छिन् । बाबु, आमा, गुरु र महात्माको अपमानबाट पैदा भएको पापले पृथ्वी चारैतिर बोझिली बन्दछिन् ॥७९-८२॥

यिनै पृथिवीको भारले बेसरी थिचिएका पद्म नाम गरिएका नागराज गह्रुङ्गो भएको भारको पीडाले पिल्सिएर ठूलो शब्द गर्दै सुस्केरा हाल्दछन् । त्यस भुवनका मालिक दैत्यका राजा प्रह्लाद छन् । ती त्यस भुवनमा रत्नमय भवनमा करोडौं राक्षसहरूका साथ आनन्दसित विराजमान भएका छन् । अधम मानिसले सङ्कल्प नगरीकन जुन धर्म गर्दछ, त्यो सबै प्रह्लाद नाम गरेका राक्षसले ग्रहण गर्दछन् । यिनले दिव्य एक हजार वर्षसम्म हिउँमात्र खाई रुद्रको आराधना गरेर रुद्रात्मा भगवान् शिवलाई खुसी तुल्याई वर पाएका थिए ॥८३-८८॥

सबैभन्दा तल महातल नाम गरेको कमलको आकारको भुवन छ । यो भुवन पाँच रङ्ग भएका मणिको ज्वालाले सधैँ चम्किरहन्छ । महातल नाम गरेको भुवन पचास करोड योजन फैलावट र दशलाख योजन उचाइ भएको छ । त्यहाँ सर्पका राजा अनन्त सम्पूर्ण रत्नले सम्पन्न भएको घरमा बस्नुभएको छ । उहाँलाई सबै देवता र राक्षसहरूले नमस्कार गर्दछन् । उहाँको शरीर सुन्दर रत्नका कान्तिले देदीप्यमान छ । राता आँखा र ओठले गर्दा उहाँको मुख सुन्दर देखिन्छ । हजार शिर भएका रमणीप्रिय नागराजले ठूलो कमलले युक्त भएको सुन्दर शिर धारण गर्नुभएको छ । अनन्त नाम गरेका शिवभक्त नागराज अविनाशी शिवजीको सधैँ पूजा गर्नुहुन्छ र छैठौं पाताललाई धारण गर्नुहुन्छ ॥८९-९३॥

---

३१. नृपात्तस्वहृताद्भयात्, इति न.सं.पु.पाठः ।
३२. अन्यायैर्यच्च दण्डन्ति, इति न.सं.पु.पाठः ।
३३. भित्वा पञ्चरसान् गाढम्, इति न.सं.पु.पाठः ।
३४ महातलस्य मानतः, इति न.सं.पु.पाठः ।

पापाङ्किता यदा मर्त्या दानधर्मैर्विवर्जिताः । मिथ्याभाजो भवेयुस्ते गरिष्ठा च भवेन् मही ॥९४॥
अगम्यगमना दुष्टाः[३५] परदाराविमर्दकाः । पिशुनाश्च भवेयुस्ते गुरुतरा भवेन्मही ॥९५॥
गोब्राह्मणामरान्मर्त्या निन्दन्ति शास्त्रसज्जनान्[३६] । मन्त्रं धर्मोपवासञ्च तदा गुरुर्भवेन्मही ॥९६॥
अधर्मिष्ठाश्च राजानो नीतिधर्मविवर्जिताः । न रक्षन्ति प्रजाधर्मान् तदा गुरुर्भवेत्क्षितिः ॥९७॥
प्रजाः सम्यङ् न सेवन्ते द्विजान् गाश्च सुरान् नृपान् । तस्माद् गुर्वी भवेत्क्षोणी स्वस्वकर्मविवर्जिताः ॥९८॥
यदा विप्रा न कुर्वन्ति स्नानादिकर्मवर्जिताः । जपहोमार्चनं दानं वेदधर्मपराङ्मुखाः ॥९९॥
असत्प्रतिग्रहे सक्ता भवेयुर्ब्रह्मराक्षसाः । अभक्ष्यभक्षकास्तस्मादतिगुरुर्भवेत्क्षितिः ।
ताडयन्ति द्विजान् गाश्च तत्स्वं लुण्ठन्ति भौमिकाः ॥१००॥
नारकाश्च भवेयुस्ते ततो गुर्वी भवेद् धरा ।[३७] गोद्विजदेवभूम्यो हि ह्रियन्ते येन पापिना ॥१०१॥
स याति नरकं घोरं गुर्वी पापाद् भवेन् मही[३८] । तत्किल्विषाणि संवोढुमसमर्था भवेत्क्षितिः ॥१०२॥
पापातिगुर्विणी[३९] क्षोणी भवेच्चैव क्रमात् क्रमात् । क्षितौ हरति यो सस्यं भूस्वामिनं प्रवञ्चयन् ॥१०३॥
स्वामी वा क्षेत्रकर्तारमल्पसस्या[४०] भवेद्धि सा । तद्भारेण दृढाक्रान्तो ह्यनन्तो नागराण्मुने ॥१०४॥
उच्छ्वसिति महागाढं सर्वभारव्यथोद्भवम् । बहूच्छ्वासोद्गताद्वायोर्भूमिकम्पः प्रजायते ॥१०५॥
भित्त्वा षष्ठञ्च पातालं बहुप्राणिभयावहः । शंसति[४१] वेपथुर्नित्यं महामारीं महाभयम् ॥१०६॥
संवर्तको महामूर्तिर्जगद् ग्रसति कुम्भज । अर्चन्ति देवगोविप्रान् दानधर्मरता नृपाः ॥१०७॥
प्रजाश्च सुखिनोऽजस्रं भविष्यन्ति रसातले । ब्राह्मणाश्च तपोनिष्ठा वेदाध्ययनतत्पराः ॥१०८॥
जपोपवासनिष्ठाश्चेत्सर्वदा कुर्भविष्यति । एवं शंसति तत्कम्पः सर्वेभ्यो मेदिनीतले ॥१०९॥

---

जब मानिसहरूले दान, धर्म गर्दैनन्, झूटो बोल्दछन् र पापी हुन्छन्, तिनीहरूको पापले पृथ्वी बोझिली हुन्छिन् । जब मानिसहरू अगम्यामाथि गमन गर्दछन्, अर्काकी स्त्रीहरूलाई मर्दन गर्न थाल्दछन् र दुर्जन बन्न पुग्दछन्, तिनीहरूको पापले पृथ्वी भारवती हुन्छिन् । जब मानिसहरूले गाई, ब्राह्मण, देवता, शास्त्र, सज्जन, मन्त्र, धर्म र उपवासको निन्दा गर्छन्, त्यस पापले गर्दा पृथ्वी सधैं बोझिली हुन्छिन् । नैतिकता र धर्महीन भएका पापी राजाहरूले जब प्रजा र धर्मको रक्षा गर्दैनन्, त्यसबेला तिनीहरूको पापले पृथ्वी सधैं बोझिली बन्न पुग्छिन् ॥९४–९७॥

जब नरनारीहरूले पनि आफ्नो–आफ्नो कर्मलाई छोडेर गाई, ब्राह्मण, देवता र राजाको सेवा गर्दैनन्, त्यसबेला तिनीहरूको पापले पृथ्वी अति नै बोझिली हुन्छिन् । जब ब्राह्मणहरूले स्नानादि कर्मलाई छाडेर वेदले बताएको धर्मदेखि पराङ्मुख हुँदै जप, होम, पूजा र दान गर्दैनन्, खराब कुरालाई ग्रहण गर्न थाल्दछन् र अभक्ष्य कुरा खान्छन् त्यसबेला तिनीहरू ब्रह्मराक्षस बन्दछन् । त्यस पापले गर्दा पृथ्वी अत्यन्त बोझिली बन्न पुग्छिन् । जब राजाहरू ब्राह्मण, गाई र उनीहरूको सम्पत्तिलाई लुट्न थाल्छन्, त्यसबेला तिनीहरू नरकभोग गर्न योग्य पापी बन्दछन् जसबाट पृथ्वी अत्यन्त बोझिली बन्दछिन् ॥९८–१००½॥

जुन पापीले गाई, ब्राह्मण र देवताका लागि छुट्याइएको भूमिलाई हरण गर्दछ त्यो डरलाग्दो नरकमा पर्दछ । तिनीहरूको पापले पृथ्वी बोझिली बन्दछिन् र त्यो पापलाई उनी बोक्न सक्निनन्, क्रमशः झन्–झन् बोझिलो हुँदै जान्छिन् । जसले जमिनको स्वामीलाई ठगेर अन्नबाली हरण गर्दछ, अर्थात् पूर्ण बाली बुझाउँदैन अथवा जग्गाधनीले जग्गा कमाउने व्यक्तिलाई उसले पाउनुपर्ने अन्न दिँदैन भने त्यसबेला पृथ्वीमा अन्न घटेर जान्छ ॥९९–१०४॥

त्यस पापको भारले थिचिएका अनन्त नागराज अत्यन्त पीडित भएर ठूलो सुस्केरा हाल्छन् । त्यस्तो सुस्केराबाट सम्पूर्ण प्राणीहरूलाई त्रास पैदा गर्ने खालको भूकम्प छैटौं भुवनलाई भेदन गर्दै उत्पन्न हुन्छ । त्यस कम्पले पृथ्वीमा ठूलो महामारी र महाभय हुने कुराको सङ्केत गर्दछ ॥१०५–१०६॥

हे अगस्त्य मुनि ! त्यसबेला महामूर्ति संवर्त्तकले सम्पूर्ण जगत्लाई नै खानेछन् । जब दानधर्ममा संलग्न भएर राजाहरूले देवता, गाई र ब्राह्मणहरूलाई सम्मान वा पूजा गर्नेछन्, अनि प्रजाहरू पृथ्वीमा नित्य सुखी हुनेछन् । त्यसबेला ब्राह्मणहरू सधैं तपस्या, वेदाध्ययन, जप तथा उपवासमा रत हुनेछन् र पृथ्वी पनि शान्त र सर्वदायिनी हुनेछिन् ॥१०७–१०९॥

---

३५. अगम्यगमने निष्ठाः, इति न.सं.पु.पाठः ।
३६. मर्त्या निन्दन्ति शास्त्रसज्जनात्, इति न.सं.पु.पाठः ।
३७. गुरुर्भवेद्धरा, इति न.सं.पु.पाठः ।
३८. तेषां पापाद्गुरुर्मही, इति न.सं.पु.पाठः ।
३९. ततश्चातिगुरुः, इति न.सं.पु.पाठः ।
४०. अपि तत्क्षेत्रकर्तारो ह्यल्पशस्या, इति न.सं.पु.पाठः ।
४१. सूचयति, इति न.सं.पु.पाठः ।

तस्य चाधिपतिर्दैत्यो हयग्रीवो महानभूत् । कोटिकोट्यसुरैः सार्धं पूजयामास शङ्करम्[४२] ॥११०॥
निकुम्भान्धकसुह्रादैः कालेन मधुना समम् । विराजते सभायां स निशुम्भेन तथापरैः ॥१११॥
दैत्यपत्न्यो महाभागा दैत्यानां कन्यकाः शुभाः । कुमाराश्चैव दैत्यानां विराजन्ते मिथस्ततः ॥११२॥
असद्वृत्या च द्रव्याणि सञ्चिन्वन्ति[४३] नराधमाः । तत्क्रियादानधर्मादीन् तत्सर्वं हरतेऽसुरः ॥११३॥
हिमालये गिरिश्रेष्ठे वरं लेभे च[४४] शङ्करात् । दिव्यवर्षसहस्रेण तपसाऽतोषयद् हरम् ॥११४॥
पातालानाञ्च सप्तानामधोभागे तमस्सु च । सन्ति नरककुण्डानि गृहाणि वृजिनात्मनाम् ॥११५॥
अष्टाविंशतिरेवाधः क्षितेर्नरककोटयः । सप्तमस्य तलस्यान्ते घोरतमसि संस्थिताः ॥११६॥
घोराख्या प्रथमा कोटिः सुघोरा तदधः स्थिता । अतिघोरा महाघोरा घोररूपा तु पञ्चमी ॥११७॥
षष्ठी तरलताराख्या सप्तमी च भयानका । अष्टमी कालरात्रिश्च नवमी च भयोत्कटा ॥११८॥
दशमी तदधश्चण्डा महाचण्डा ततोऽप्यधः । चण्डकोलाहला चण्डा प्रचण्डा नवनायिका ॥११९॥
पद्मा पद्मावती भीमा भीषा भीषणनायिका । कराला विकराला च विंशा वज्राभिधा स्मृताः ॥१२०॥
त्रिकोणा पञ्चकोणा च सुदीर्घा परिवर्तुला । सप्तभौमा च भौमा च दीप्ता मायेति चाष्टमी ॥१२१॥
ता नामतः समुद्दिष्टा घोरा नरककोटयः । अष्टाविंशतिरेवैताः पापिनां यातनात्मिकाः ॥१२२॥
आसां क्रमेण विज्ञेयाः पञ्चपञ्चैव नायिकाः । प्रत्येकं सर्वकोटीनां नामतस्तान्निबोधत ॥१२३॥
रौरवः प्रथमस्तेषां रुदन्ति यत्र देहिनः । महारौरवपीडाभिर्महान्तोऽपि रुदन्ति हि ॥१२४॥

---

त्यस भुवनको मालिक हयग्रीव नाम गरेका दैत्य भए। उनले करोडौं–करोड राक्षसहरूका साथ बसेर भगवान् शङ्करको पूजा गरे। उनी निकुम्भ, अन्धक, सुह्राद र निशुम्भ तथा अरू दैत्यहरूका साथ समयोचित सुरा लिएर सभामा विराजमान भएका छन्। त्यस्तै अति भाग्यमानी दैत्यका पत्नीहरू, दैत्यका कन्याहरू, दैत्यका कुमारहरू पनि त्यहाँ परस्पर सुशोभित भएर रहेका छन्। जसले नराम्रो वृत्ति गरेर सम्पत्ति कमाउँछ र त्यसबाट धर्म, दान आदि कर्म गर्दछ, त्यो सबै यिनै राक्षसले हरण गर्दछन्। पर्वतश्रेष्ठ हिमालयमा हयग्रीव नामक दैत्यले दिव्य एक हजार वर्षसम्म तपस्या गरेर शिवजीलाई खुसी तुल्याई वर प्राप्त गरेका थिए ॥११०–११४॥

सातवटा पातालको अन्धकारमय तल्लो भागमा पापीहरूलाई राख्ने नरकका कुण्डहरू छन्। पृथ्वीमुनि सातौँ भुवनको अन्त्यमा डरलाग्दो अन्धकारभित्र अट्ठाईसवटा नरककुण्डहरू रहेका छन्। तीमध्ये पहिलो नरककुण्डको नाम घोरा हो। त्यसभन्दा तल सुघोरा छ। सुघोराभन्दा तल अतिघोरा, अतिघोराभन्दा तल महाघोरा र महाघोराभन्दा तल पाँचौं घोररूपा नाम गरेको नरककुण्ड छ ॥११५–११७॥

छैठौं नरककुण्ड तरलतारा हो। त्यसभन्दा तल सातौं भयानक नाम गरेको नरककुण्ड छ, त्यसभन्दा तल आठौं नरककुण्ड कालरात्रि छ, कालरात्रिभन्दा तल नवौँ नरककुण्ड भयोत्कटा रहेको छ। त्यसभन्दा मुनि दसौँ नरककुण्ड चण्डा छ। त्यहाँभन्दा तल महाचण्डा नाम गरेको नरककुण्ड रहेको छ। त्यसैगरी क्रमशः एकपछि अर्को तल हुँदै चण्डकोलाहला, चण्डा, प्रचण्डा, नवनायिका, पद्मा, पद्मावती, भीमा, भीषभीषण–नायिका, कराला, विकराला र बीसौँ वज्रा नरककुण्ड रहेका छन्। त्यस्तै त्रिकोणा, पञ्चकोणा, सुदीर्घा, परिवर्तुला, सप्तभौमा, भौमा, दीप्ता, माया गरी अरू आठवटा नरककुण्डहरू रहेका छन्। तिनीहरूको नाममात्र मैले बताएँ। पापीहरूलाई यातना दिने यी अट्ठाईसवटा नरककुण्डहरू अत्यन्त डरलाग्दा छन् ॥११८–१२२॥

यिनीहरूका क्रमैले पाँच–पाच वटा नायिकाहरू छन्। सबै किसिमका नरकहरूको स्थिति तिनीहरूकै नामबाट बुझ्नुपर्दछ। तिनीहरूमध्ये पहिलो नरक रौरव हो। त्यहाँ प्राणीहरू ठूलो डाँको छोडेर पीडाले रोइरहेका हुन्छन्। तिनीहरूलाई देख्दा महापुरुष पनि रुन्छन् ॥१२३–१२४॥

---

४२. कोटिकोट्यसुरैर्युक्त अपूपुजच्च शङ्करम्, इति न.सं.पु.पाठः। ४३. यद्रव्यान् सञ्चयन्ति, इति न.सं.पु.पाठः।
४४. लब्ध्वा वरञ्च, इति न.सं.पु.पाठः।

तमः शीतं तथा चोष्णं पञ्चाद्या नायकाः स्मृताः । रौरवाद्यमवीच्यन्तं नरकाणां शतं स्मृतम् ॥१२५॥
चत्वारिंशत्समधिकं महानरकमण्डलम् । एषु पापाः प्रपच्यन्ते नराः पापानुरूपतः ॥१२६॥
यातनाभिर्विचित्राभिर्नराः कर्मक्षयाद् भृशम् । आमलप्रक्षयाद्यद्वदग्नौ धावन्ति[४४] धावकाः ॥१२७॥
तथा पापक्षयात्पापाः शोध्यन्ते नरकाग्निषु । सुगाढं हस्तयोर्बद्ध्वा तप्तशृङ्खलया नराः ॥१२८॥
महावृक्षाग्रशाखासु लम्ब्यन्ते यमकिङ्करैः । दोलन्तश्चातिवेगेन निःसंज्ञा यान्ति योजनम् ॥१२९॥
अन्तरीक्षस्थितानां तु लौहभारद्वयं गुरु[४५] । पादयोर्बध्यते तेषां यमदूतैर्महाबलैः ॥१३०॥
तेन भारेण महता भृशमानमिता नराः । ध्यायन्तः स्वानि कर्माणि तूष्णीं तिष्ठन्ति निश्चलाः ॥१३१॥
ततः केशैरग्निकल्पैर्लोहदण्डैः सकण्टकैः । हन्यन्ते किङ्करैर्घोरैः समन्तात्पापकारिणः ॥१३२॥
ततः क्षारेण दीप्तेन वह्नेरपि विशेषतः । समन्ततः प्रलिप्यन्ते क्षताङ्गा जर्जरीकृताः ॥१३३॥
पुनर्विदार्य चाङ्गेषु शिरसः प्रभृति क्रमात् । वृन्ताकवत्प्रपच्यन्ते तप्ततैलकटाहिताः ॥१३४॥
विष्ठाचूर्णे ततः कूपे कृमीणां निचये ततः । मेदोऽसृक्पूयपूर्णायां वाप्यां क्षिपन्ति तान्पुनः ॥१३५॥
भक्ष्यन्ते कृमिभिस्तीक्ष्णैर्लोहतुण्डैश्च वायसैः । श्वभिर्दंशैर्वृकैर्व्याघ्रैरौद्रैश्च विकृताननैः ॥१३६॥
पच्यन्ते मत्स्यवद्वाप्यां विविधनरकेषु ते ।

एतत्प्रमाणं कथितं मया ते पातालपातुर्निलयस्य[४६] सूक्ष्मम् ।
भूयो रसादेः कथयामि कीर्तिं तत्सप्तलोकस्य शृणुष्व मत्तः ॥१३७॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे पातालकीर्तनं नाम पञ्चमोऽध्यायः ॥५॥

---

अन्धकार, चिसो र तातो आदि गरिएका त्यस नरकका पाँचवटा नायक छन् । त्यहाँ रौरव आदि गरिएका सयवटा नरकहरू छन् । चालीसभन्दा बढी ठूला–ठूला नरककुण्डहरू त्यहाँ रहेका छन् । पाप अनुसार पापीहरूलाई त्यहाँ पकाइन्छ ॥१२५–१२६॥

कर्म नाश भएका मानिसहरू अनेक किसिमका पीडाले युक्त भएर पाप नसकिएसम्म आगोमा पोलिन्छन् । त्यस्तै पाप नाश गर्नका लागि पापीहरूलाई नरकको अग्निमा हालेर शुद्ध पारिन्छ । तताएको सिक्रीले खूबसित हातमा बाँधेर अत्यन्त ठूलो रुखको माथिल्लो हाँगामा यमराजका दूतहरूले झुण्ड्याउँछन् र अत्यन्त वेगसित एक योजन पर पुग्ने गरी हल्लाइदिन्छन् । यसले गर्दा पापी निश्चेष्ट बन्न पुग्छन् ॥१२७–१२९॥

बलशाली यमराजका दूतहरूले आकाशमा झुण्ड्याएर दुईवटा फलामका भारी मानिसका गोडामा बाँधिदिन्छन् । त्यस भारले ती पापी मानिसहरू आफूले गरेको कुकृत्य सम्झँदै निश्चल भएर बस्दछन् । त्यसपछि यमराजका डरलाग्दा दूतहरू काँडा भएका आगोजस्ता ताता फलामका लठ्ठीले तिनीहरूलाई चारैतिरबाट पिट्न थाल्दछन् ॥१३०–१३१॥

त्यसपछि यमदूतहरूद्वारा ती पापीहरूको शरीरमा आगोभन्दा पनि तातो खरानी धसेर उनीहरूलाई क्षत–विक्षत तुल्याएर जर्जर पारिदिन्छन् । त्यसपछि शिरदेखि क्रमशः अङ्गहरू चिरेर तताएको तेल भएको कराहीमा भान्टा पकाए झैं पकाउँछन् । त्यसपछि विष्ठाको धूलो र कीरैकीराको समूहले भरिएको कुवामा लगेर हालिदिन्छन्, अनि तिनीहरूलाई फेरि बोसो, रगत, पीपले भरिएको तलाऊमा लगेर फ्याँकिदिन्छन् । त्यहाँ तीखो फलामको सूँड भएका कीरा, काग, डरलाग्दा अनि विकृत मुख भएका कुकुर, दुम्सी, ब्वाँसो र बाघले तिनीहरूलाई खान्छन् । विभिन्न नरकहरूमा ती पापीहरूलाई माछो पकाएझैं पकाइन्छ ॥१३५½॥

हे अगस्त्य मुनि ! मैले पातालका विभिन्न भुवनहरूका बारेमा सूक्ष्म ढङ्गले सबै प्रमाणहरू बताएँ । अब म पृथ्वी आदि सात लोकका बारेमा बताउँनेछु, मबाट सुन्नुहोस् ॥१३६॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गत हिमवत्खण्डमा पातालचर्चानामक पञ्चम अध्याय पूर्ण भयो ।

---

४५. धाम्यन्ति, इति न.सं.पु.पाठः ।
४६. नरः, इति न.सं.पु.पाठः ।
४७. पातालपात्र निलयस्य, इति न.सं.पु.पाठः ।

# षष्ठोऽध्यायः

## लोकानुकीर्तनम्

स्कन्द उवाच

पातालानाञ्च सप्तानामुपरि संस्थिता मही। तस्या एव प्रमाणञ्च वक्ष्यामि शृणु विस्तरम् ॥१॥
कोटिकोटिसुविस्तारो[1] योजनानां समन्ततः। योजनानां सहस्राणि दशैवोर्ध्वं समुच्छ्रितः ॥२॥
भूर्लोक इति विख्यातः सर्वलोकोत्तमोत्तमः। गन्धर्वयक्षरक्षोभिः पिशाचैश्च निषेवितः ॥३॥
मनुष्यैः पशुभिश्चैव मृगैः पक्षिसरीसृपैः। स्थावरैर्विविधाकारैर्भूतैरेतैस्तु षड्विधैः ॥४॥
द्वीपानाञ्चैव सप्तानां भूर्लोकमध्यतो मुने। जम्बूद्वीप इति ख्यातश्चार्धचन्द्राकृतिः क्वचित् ॥५॥
हेमवच्छिखरे रम्ये प्रोत्तुङ्गे शिखरोत्तमे। जम्बूवृक्षो महानासीदगम्ये सर्वजन्तुभिः ॥६॥
योजनैकसुविस्तारः तदेवमुच्छ्रितः शुभः। फलति षड्ऋतुन् व्याप्य बहुजम्बूफलानि तत् ॥७॥
यानि पक्वफलान्यार्य पतन्ति गिरिशेखरे। तस्मान्मुने रसक्लिन्नात्सम्भूता हि नदी वरा ॥८॥
एकदा सूर्यपुत्रीयं तस्याञ्छन्दितुमागता। यमुना शापिता सेति दुर्वाससा द्रवीभव ॥९॥
सङ्गता सा ववावार्या[2] तद्द्रवीभूतयानिशम्। यमुनेति समाख्याता द्वयोः सङ्गाच्च सा नदी ॥१०॥
ब्रह्मणा ऋषिभिः स्नात्वा सूर्येण च पवित्रिता। जम्बूवृक्षस्य नाम्नैव क्षारोदः प्रान्तरस्ततः ॥११॥
जम्बूद्वीप इति ख्यातः सर्वद्वीपान्तरे स्थिरः। पञ्चाशत्कोटिविस्तारो योजनानां विराजते ॥१२॥

---

अध्याय- ६
सप्तद्वीप र दिव्यलोकको वर्णन

कार्तिकेयले भन्नुभयो – हे अगस्त्य ! पाताल आदि सात लोकभन्दा माथि पृथ्वी रहेको छ। त्यस पृथ्वीको प्रमाण सविस्तार म भन्छु, सुन्नहोस्। यो पृथ्वीलोक चारैतर्फ करोडौं योजन फैलिएको र दश हजार योजन उचाइ भएको छ। प्रसिद्ध यो भूर्लोक सबै लोकभन्दा उत्तम लोक हो। यो लोक गन्धर्व, यक्ष, राक्षस र पिशाचहरूले युक्त रहेको छ। मनुष्य, पशु, पक्षी, सर्प आदि अनेक प्रकारका स्थावर (पर्वत, वृक्ष) र छ प्रकारका प्राणीहरूले यो लोक सुशोभित छ ॥१-४॥

हे अगस्त्य मुनि ! सातै द्वीपहरूमध्ये भूर्लोकको बीचमा जम्बूद्वीप छ। यो कतै अर्धचन्द्राकार छ। सबै जन्तुहरू पुग्न नसक्ने सुन्दर अग्लो उत्तम हिमालयको शिखरमा ठूलो जम्बू (जामुना) को वृक्ष छ। एक योजन फराकिलो र एक योजन अग्लो त्यो वृक्ष छवटै ऋतुमा फलहरूले भरिपूर्णरहन्छ। हे पूज्य मुनि ! त्यस पर्वतको टाकुरामा जुन-जुन फल पाकेर खस्छन्, तिनको रस बगेर त्यसबाट उत्तम नदी बनेको छ ॥५-८॥

एकदिन सूर्यकी पुत्री यमुना नदी त्यस ठाउँमा डुल्दै आइपुगिन्। दुर्वासा ऋषिले यमुनालाई पानी बन भनेर सराप दिए। त्यो उत्तम नदी जम्बूफलबाट पग्लिएको रससित मिलेर निरन्तर बग्न थाल्यो। यसरी ती दुईको सङ्गमबाट त्यो नदी यमुना नदीको नामले प्रसिद्ध हुन पुग्यो। ब्रह्माजी, ऋषिहरू र सूर्यले पनि स्नान गरेको हुनाले त्यो नदी पवित्र भएको छ। क्षार समुद्रको तटमा रहेको यो द्वीप जामुनावृक्षका नामले गर्दा जम्बूद्वीप भनेर प्रसिद्ध भएको छ। सबै द्वीपको माझमा रहेको यो द्वीप पचास करोड योजनमा फैलिएको छ ॥९-१२॥

---

१. कोटिकोटिसुविस्तारम् ... समुच्छ्रितम्, इति न.सं.पु.पाठः। २. सङ्गतेन ववाहार्या, इति न.सं.पु.पाठः।

जम्बूद्वीपो महाद्वीपः सर्वद्वीपोत्तमोत्तमः । जायन्ते कर्मभिस्तत्र सुखदुःखान्विता नराः ॥१३॥
जम्बूद्वीपे कृतं यद्यद् भुञ्जते तत्तदात्मना[३] । कर्मद्वीप इति ख्यातः पुण्यभूम्याश्च कर्मदः ॥१४॥
करोति यानि कर्माणि मर्त्यस्तानि फलन्ति हि[४] । धर्माधर्मं महत्कर्म यत्कृतं जीविभिर्मुने ॥१५॥
तत्सर्वं प्राप्यते नूनं जम्बूद्वीपे हि कर्मदे । तन्मध्ये गिरिराजेन्द्रो हिमालयो विराजते ॥१६॥
मेरोर्दक्षिणभागे च द्वितीयो मेरुसंज्ञितः । प्लक्षवृक्षः स्थितो यत्र प्लक्षद्वीपस्ततोऽभवत् ॥१७॥
शाल्मलिशाखिना रेजे शाल्मलिद्वीप आश्रुतः । कुशेन राजते यस्मात् कुशद्वीपो विचक्षते ॥१८॥
क्रौञ्चाचलेन यो रेजे क्रौञ्चद्वीप इति श्रुतः । शाकाद्रिणा हि यो रेजे शाकद्वीपोऽभवन्मुने ॥१९॥
पुष्करेण समं रेजे यो द्वीपो ह्यच्युतात्मना । पुष्करद्वीप इत्याख्यः सर्वद्वीपोत्तमोत्तमः ॥२०॥
भूर्लोकतो भुवर्लोके यावदादित्यमण्डलम् । सन्त्यस्मिन् चान्तिके तावत् वसुरुद्राः सभास्कराः ॥२१॥
आदित्यमण्डलादूर्ध्वं प्रोक्तं स्वर्लोकमाध्रुवात् । विमानकोटयस्तस्मिन्नष्टाविंशतिरासते ॥२२॥
मेढीभूतो विमानानां सर्वेषामुपरि ध्रुवः । चलन्ति यत्र बद्धानि क्रमेणाऽनिलमण्डले ॥२३॥
योजनानां महीपृष्ठादूर्ध्वं पञ्चदशे ध्रुवः । नियताश्चानिलस्कन्धाः सप्तास्मिन्नुत्तरे स्थिताः ॥२४॥
पृथिव्यां प्रथमः स्कन्धः स्थित आमेघमण्डलात् । आवहो नाम मेघानां व्यूहनावाहनादिकृत् ॥२५॥
द्वितीयः प्रवहो नाम विबद्धः सूर्यमण्डले । तृतीय उद्वहो वायुस्कन्ध इन्दुं प्रति स्थितः ॥२६॥
चतुर्थः संवहः स्कन्धः स्थितो नक्षत्रमण्डले । स्कन्धेषु पञ्चमः सोऽपि विवहः परिकीर्तितः ॥२७॥
स्कन्धः परावहः षष्ठः स्थितः सप्तर्षिमण्डले । वायुः परिवहो नाम निबद्धः सप्तमो ध्रुवे ॥२८॥

---

जम्बूद्वीप सबै द्वीपहरूमा उत्तम द्वीप मानिन्छ र यहाँ आफ्ना कर्मले सुखदुःखको भोग गर्ने मानिसहरू जन्मन्छन् । जम्बूद्वीपमा जुन–जुन कर्म गर्दछन् तिनीहरूको आत्माले त्यसको फल जन्मान्तरमा भोग गर्न पाउँछ। त्यसैले यसलाई कर्मद्वीप र पुण्यभूमि पनि भनिएको छ। हे मुनि ! यस भूमिमा मनुष्यले जे–जस्तो धर्म–अधर्म गरेको छ, जन्मान्तरमा तिनीहरूका लागि त्यही कर्म फलदायी हुन्छ अर्थात् यस भूमिमा मानिसले जे–जस्तो धर्म अथवा अधर्म गर्दछ त्यसको फल उसले जन्मान्तरमा गएर भोग गर्नुपर्दछ। जसको माझमा पर्वतराज हिमालय सुशोभित भएर रहेका छन् त्यस्तो कर्मक्षेत्र जम्बूद्वीपमा सबै फल प्राप्त गर्न सकिन्छ ॥१३–१६॥

सुमेरु पर्वतको दक्षिण दिशामा मेरुनामक दोस्रो ठूलो पाखरको रुख रहेको हुनाले त्यस द्वीपलाई प्लक्षद्वीप भनिन्छ । अर्को शाल्मली (सीमल) वृक्षले विराजित भएको जुन द्वीप छ त्यसलाई शाल्मलीद्वीप भनिन्छ । यस्तै कुशवृक्षले शोभित अर्को द्वीपलाई कुशद्वीप भनिन्छ। हे मुनि ! जुन द्वीप क्रौञ्च नाम गरेको पर्वतले सुशोभित छ त्यो द्वीप क्रौञ्चद्वीप नामले प्रसिद्ध छ। जुन द्वीप शाक नामक पर्वतले युक्त छ त्यो शाकद्वीप हो। भगवान् विष्णुकै स्वरूप मानिने पुष्कर अर्थात् कमलले शोभित भएको अर्को द्वीप पुष्कर नामले प्रसिद्ध सबैभन्दा उत्तम द्वीप हो ॥१७–२०॥

भूर्लोकदेखि माथि सूर्यमण्डलसम्म भुवर्लोक छ । यस लोकको नजिकै सूर्य, वसु र रुद्रहरू रहेका छन्। सूर्यमण्डलदेखि माथि ध्रुवलोकसम्मको भागलाई स्वर्लोक भनिन्छ। त्यसमा अट्ठाईस करोड विमानहरू रहेका छन्। जहाँ सबै विमानहरूको बीचमा सियोझैँ भएर ध्रुवलोक रहेको छ। त्यही ध्रुवलोकमा बाँधिएका विमानहरू वायुमण्डलमा क्रमैले घुमिरहेका हुन्छन् ॥२१–२३॥

ध्रुवलोक पृथ्वीतलभन्दा पन्ध्र योजनमाथि रहेको छ। पृथ्वीभन्दा माथि सात वायुस्कन्ध (समूह) नियत भएर रहेका छन्। तीमध्ये पहिलो आवह नामको वायुस्कन्ध पृथ्वीदेखि मेघमण्डलसम्म रहेको छ। यसले मेघहरूलाई बटुल्ने र फटयाउने काम गर्दछ ।दोस्रो प्रवह नामक वायुमण्डल सूर्यमण्डलमा बाँधिएको छ । तेस्रो उद्वह नामक वायुस्कन्ध चन्द्रमण्डलमा रहेको छ। चौथो संवहस्कन्ध नक्षत्रमण्डलमा रहेको छ। पाँचौं वायुस्कन्ध ग्रहमण्डलमा रहेको छ। त्यसलाई विवहस्कन्ध भनिएको छ। छैठौं परावहस्कन्ध सप्तर्षिमण्डलमा रहेको छ। सातौं परिवह नामक वायुस्कन्ध ध्रुवलोकमा अवस्थित छ ॥२४–२८॥

---

३. तन्तमात्मना, इति न.सं.पु.पाठः ।

४. यत् तत् करोति मत्यस्तं तेभ्यः फलति तत्र तत्, इति न.सं.पु.पाठः ।

करोत्युत्प्लवनादीनि वर्षणादीनि चावहः। उपरिष्टात्स्थितः षण्णां विमानोद्वहनक्रियाम् ॥२९॥
योजनानां ध्रुवात्कोटिर्महर्लोकः समुच्छ्रितः। विनिवृत्ताधिकाराणामधिवासो महात्मनाम् ॥३०॥
विंशतिकोटयोऽष्टौ च सुराणामधिकारिणाम्। जनाः स्वर्लोकमागत्य नियोगात्पद्मजन्मनः ॥३१॥
स्थित्वा मन्वन्तरं तत्र स्वव्यापारावसानके। आरोहन्ति महर्लोकमागच्छन्त्यपरे जनाः ॥३२॥
ब्रह्मणो दिवसेनेत्थं देववर्गाश्चतुर्दश। क्रमेण कृत्वा कर्माणि महर्लोके वसन्ति ते ॥३३॥
कोटिद्वयं महर्लोकाज्जनलोकः समुच्छ्रितः। साध्या नाम सुरास्तस्मिन् वसन्ति सुखिनः सदा ॥३४॥
योजनानां तपोलोके चतस्रः कोटयस्तु याः[५]। प्रजानां पतयस्तत्र मानसा ब्रह्मणः सुताः ॥३५॥
सत्यलोकस्तपोलोकात्षट्कोटिषु[६] समुच्छ्रितः। इन्द्रनीलप्रतीकाशो महाभोगैरलंकृतः ॥३६॥
विष्णुस्थानात्परं लोको मम लोको घटोद्भव। स्वच्छमौक्तिकसङ्काशो वरभोगसमन्वितः ॥३७॥
मम स्थानात्परं स्थानमुमादेव्याः प्रकीर्तितम्। तप्तचामीकरप्रख्यमशेषगुणसंयुतम् ॥३८॥
उमास्थानाच्च परतः स्थानमाद्यमुमापतेः। विष्णुलोकाच्च परतः श्रीमच्छिवपुरं महत् ॥३९॥
द्वात्रिंशत्कोटिविस्तीर्णं तदर्धेन समुच्छ्रितम्। महाप्रभावसंयुक्तैः सूर्यायुतसमप्रभैः ॥४०॥
गणैरप्युषितं स्थानमसंख्यैर्योगतत्परैः। अप्सरोगणसङ्कीर्णैः सर्ववाद्यसमन्वितैः ॥४१॥
गीतनृत्यरसोपेतैरप्रमेयगुणान्वितैः। मनोजवैरसंख्यैश्च परिवारैः समन्वितैः ॥४२॥
विमानैः सर्वतो व्याप्तं तारकाभिरिवाऽम्बरम्। क्वचिद्दोलागृहै रम्यैः किङ्किणीजालमण्डितैः ॥४३॥
अगम्यं सर्वदेवानां ध्यायमानं सुरासुरैः। विकारीन्द्रियषड्वर्गैर्मायाभिश्च विवर्जितम् ॥४४॥

---

आवह नामक वायुले उडाउने र वर्षा गराउने काम गर्छ। यी छकिसिमका वायुमाथि रहेको आवह वायुले विमानहरू चलाउने काम गर्छ। ध्रुवलोकभन्दा करोड योजनमाथि महर्लोक छ। यो लोक कर्मबाट निवृत्त भएका महात्माहरूको वासस्थान हो। ब्रह्माजीका आज्ञाले बीस करोड अधिकारी देवताहरू एक मनुको पालासम्म स्वर्गमा भोग गरेर कर्मको फल सकिएपछि महर्लोकमा आरोहण गर्दछन्। त्यसपछि अरू आउँछन्। यसरी ब्रह्माजीको एक दिनसम्म देवताका चौध वर्ग महर्लोकमा क्रमैसँग कर्म गरेर बस्दछन् ॥२९-३३॥

महर्लोकभन्दा दुई करोड योजनमाथि जनलोक छ। त्यस लोकमा साध्य नाम भएका देवताहरू नित्य सुखपूर्वक बस्छन्। जनलोकभन्दा चार करोड योजनमाथि तपोलोक छ। त्यसमा ब्रह्माजीका मानसपुत्र प्रजापतिहरू रहेका छन्। तपोलोकभन्दा छ करोड योजनमाथि सत्यलोक छ। त्यो लोक इन्द्रनीलमणिको जस्तो कान्तियुक्त र सम्पूर्ण भोग्य वस्तुहरूले सम्पन्न छ ॥३४-३६॥

हे अगस्त्य मुनि ! विष्णुलोकभन्दा पर मेरो स्कन्दलोक रहेको छ। यस लोकको वर्ण सफा मोतीजस्तो छ भने सम्पूर्ण उत्तम भोगहरू पनि यहाँ उपलब्ध छन्। मेरो लोकभन्दा पनि पर उमा देवीको लोक छ। तताएको सुवर्णजस्तो वर्ण भएको त्यो लोक सम्पूर्ण गुणहरूले युक्त रहेको छ ॥३८॥उमालोकदेखि पर शिवजीको लोक छ। विष्णुलोकभन्दा पर सुन्दर ठूलो शिवपुर छ। यो शिवपुर बत्तीस करोड योजनमा विस्तार भएको र पचासलाख योजन उचाइ भएको छ। यस लोकमा महाप्रभावशाली, करोडौं सूर्यको जस्तो तेज भएका योगमार्गमा संलग्न असङ्ख्य गणहरू बसेका छन्। सबै किसिमका बाजा, गीत र नृत्यरसमा डुबेका अप्सराहरूले यस क्षेत्रलाई ढाकेका छन् ॥३७-४१॥

अनुपम गुण, मनसमान गतिशील र असङ्ख्य परिवारलाई बसोबास गराउने क्षमता भएका भवनहरूले ताराले आकाशलाई ढाकेजस्तै गरी यसलाई ढाकेका छन्। कतै घुँघुराहरू बज्ने झुलाघरहरू रहेको यस लोक सम्पूर्ण देवताहरूका लागि पनि अगम्य छ। विकारी, इन्द्रिय, षड्वर्ग र मायाबाट मुक्त छ। देवता र असुरहरू यस लोकमा बसी भगवान् शिवको ध्यान गर्दछन् ॥३८-४४॥

---

५. कोटियोजनाः, इति न.सं.पु.पाठः।	६. कोटयः षट्, इति न.सं.पु.पाठः।

अगोचरं हि पापानां मनसा कर्मणा सताम्। यतो वाचो निवर्तन्ते पापात्मनाञ्च देहिनाम् ॥४५॥
सर्वरत्नमये तत्र तेजोमयगृहोत्तमे। विराजते महादेव उमया सहितोऽनिशम् ॥४६॥
अखण्डानन्दमाद्येशं तत्त्वानन्दमजं शिवम्। सहजानन्दमात्मानं कैवल्यानन्दमीश्वरम् ॥४७॥
पूर्णानन्दमजानन्दं व्यापकानन्दमर्चितम्। गणैर्नित्यं सदानन्दं भक्त्या त्रिविधया मुने[७] ॥४८॥
मोक्षार्थिभिर्गणैः सर्वैर्लब्धवरैर्हिमालये। महादेवप्रसादाच्च लब्धं हि तत्पदं मुदा ॥४९॥
न जायन्ते पुनर्योनौ न ध्वंसन्ते तथा च ते। ये तत्र रुद्रलोके च तिष्ठन्तीशात्मका मुने ॥५०॥
येऽपीशयोगिनो मर्त्या जीवन्मुक्ता न संशयः। तत्र योगालयं यान्ति जन्मानि च विहाय ते ॥५१॥
प्रतप्यते येन शिवात्मना वै सम्पूज्य रुद्रं हिमवद्गिरौ ततः।
प्रलभ्यते तेन गिरीशलोको महत्तमः[८] सर्वसुखान्वितो यः ॥५२॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे सप्तद्वीपदिव्यलोकानुकीर्तनं नाम षष्ठोऽध्यायः ॥६॥

---

यस स्थललाई पापीहरूले मन, वचन र कर्मले पनि प्राप्त गर्न सक्दैनन् र सज्जनहरूले सत्कर्मबाट मात्र यस लोकमा जान पाउँछन्। यहाँ पापीहरूको बोलीसमेत पुग्न सक्दैन । यस सर्वरत्नमय हुनाले अत्यन्त तजोमय बनेको उत्तम प्रासादमा भगवान् शङ्कर भगवती पार्वतीका साथमा विराजमान हुनुहुन्छ ॥४३-४६॥

हे मुनि ! अखण्ड, आद्येश, तत्त्वानन्द, अज, शिव, सहजानन्द, आत्मानन्द, कैवल्यानन्द, ईश्वर, पूर्णानन्द, अजानन्द, व्यापकानन्द, अर्चित इत्यादि नामशब्दद्वारा गणहरूले स्तुति गरिएका, मोक्षार्थीहरूद्वारा तीनै प्रकारका भक्तिले सेवित, हिमालयमा रहनुभएका महादेवका प्रसादले त्यस लोकमा पुगेका मानिसहरू फेरि गर्भवासमा जाँदैनन् र तिनीहरू नष्ट पनि हुँदैनन्। हे मुनि ! त्यस रुद्रलोकमा रहने सबै शिवस्वरूपमा प्राप्त हुन्छन् ॥३७-५०॥

जो शिवजीको ध्यान गर्ने भक्त योगीहरू छन् ती जीवन्मुक्त हुन्छन्, यसमा कुनै सन्देह छैन। तिनीहरू जन्म लिने कर्म परित्याग गरी योगालयमा जान्छन् जसले हिमालयमा गएर शिवरूप (शान्त चित्त) भएर शिवजीको अर्चना गर्दै तपस्या गर्छ, त्यसले सम्पूर्ण सुखभोगहरूले समृद्ध अत्युत्तम शिवलोक प्राप्त गर्दछ ॥५१-५२॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गत हिमवत्खण्डमा सप्तद्वीप र दिव्यलोकको वर्णन नामक छैठौं अध्याय पूर्ण भयो।

---

७. भक्तिस्त्रिविधैर्मुने, इति न.सं.पु.पाठः। ८. अनुपमः, इति न.सं.पु.पाठः।

# सप्तमोऽध्यायः

हिमालयाय वरप्रदानम्

स्कन्द उवाच

एवं संसृज्य धाताद्रीन् कुम्भयोने हिमालयम्। तत्पाणिपीडनायाजस्तत्कालान्ते मनो दधे ॥१॥
व्याचष्ट वचनं ब्रह्मा पूर्वं पितृगणं ध्रुवम्। आत्मजयो[1]र्विवाहाय मेरोर्हिमवतो मुने ॥२॥
पितृगणसुते यूयं कन्ये द्वे च सुलक्षणे। संसृजन्तु च दिव्याङ्गे मानसैरजरामृते ॥३॥
आकर्ण्य वचनं धातुः पितृगणा हि मानसैः। ओमिति च प्रतिश्रुत्य ससृजुः कन्यका वराः ॥४॥
तासां मध्ये च दिव्याङ्गे दिव्यामेने सुलक्षणे। सर्वलक्षणसम्पूर्णे चास्तां पितृसुते पुरा ॥५॥
किञ्चित्कालान्तरेऽगस्त्य ते कन्यके ववृधतुः। क्रीडन्त्यौ सवयोभिश्च[2] सप्तवर्षवयोन्विते ॥६॥
ततश्च नारदः पैत्रं ब्रह्मणो वचनाद्ययौ। व्याचष्ट किल सन्देशं पितृभ्यो हेतुकं वचः ॥७॥

नारद उवाच

नमोऽस्तु पितरो वो हि मङ्गलं वर्ष्मसु ध्रुवम्। अव्ययात्मसुदेहेभ्यो नतिरस्तु सदा मम[3] ॥८॥
अत्रागतो हि देहोऽयं तद्बीजं श्रूयतां मुदा[4]। तद्वचनमहं येन प्रेषितः परमेष्ठिना ॥९॥
द्वे कन्ये वो हि विद्येते सर्वासां ज्येष्ठिले शुभे। वराभ्यां युज्यतां सद्यो दिव्यामेनाभिधानके ॥१०॥
मेरवे दीयतां दिव्या मेना हिमवते खलु। एवं मत्सम्मतं भद्रमित्युक्तं ब्रह्मणा हि वः ॥११॥

---

## अध्याय – ७

हिमालयलाई वरप्रदान

कार्तिक स्वामीले भन्नुभयो – यसरी ब्रह्माजीले पर्वतहरू र हिमालयको पनि सृष्टि गर्नुभयो। त्यसपछि अन्त्यमा हिमालयको विवाह गरिदिने विचार गर्नुभयो। हे अगस्त्य मुनि ! आफ्ना पुत्रहरू मेरु र हिमालयको विवाह गरिदिने विचार आएपछि ब्रह्माजीले पितृगणसँग भन्नुभयो – हे पितृगण ! तिमीहरूले मानसिक रूपमा दिव्य शरीर र उत्तम लक्षण भएका अजर तथा अमर दुई कन्याको सृष्टि गर ॥१–३॥

ब्रह्माजीको यस्तो निर्देशनवचन सुनेर पितृहरूले हुन्छ भनी मानसिक रूपमा अनेक उत्तम कन्याको सिर्जना गरे। ती कन्याहरूमध्ये सर्वलक्षणसम्पन्न दिव्य शरीर भएका दिव्या र मेना नाम गरेका दुईवटी पितृकन्या भए। हे अगस्त्य ! केही समयपछि ती दुई कन्या बढेर सात वर्षका भएर समान उमेरका कन्याहरूसँग ती दुबै बालक्रीडा गरिरहेका थिए ॥४–६॥

त्यसै बेला ब्रह्माजीको निर्देशनबमोजिम नारद ऋषि पितृहरू भएको ठाउँमा आउनुभयो र पितृगणलाई आफू आउनुको कारण भन्दै अनि ब्रह्माजीको सन्देश सुनाउँदै नारदजीले भन्नुभयो – हे पितृहरू हो ! तपाईंहरूलाई नमस्कार छ। के तपाईंहरूको शरीरमा आराम छ ? अविनाशी शरीर तथा आत्मा भएका तपाईंहरूलाई मेरो नित्य नमस्कार छ। हे प्रभो ! ब्रह्माजीले मलाई जुन प्रयोजनका लागि यहाँ पठाउनुभएको छ म आउनुको त्यो प्रयोजन हजुरहरूलाई बताउँछु सुन्नुहोस्। हे विभो ! तपाईंहरूका जेठी र माहिली दिव्या र मेना नामका दुई कन्या छन्। उत्तम वरसँग तिनीहरूको विवाह गरिदिने क्रममा ती कन्यामध्ये दिव्या मेरुलाई र मेना हिमालयलाई दिनुहोस् भन्ने मेरो भनाइ रहेको छ। ब्रह्माजीले पनि यस्तो गर्नुभयो भने तपाईंहरूको कल्याण हुन्छ भनेर भन्नुभएको छ ॥७–११॥

---

१. आत्मजानाम्, इति न.सं.पु.पाठः।
२. क्रीड्यमाने वयोभिश्च, इति न.सं.पु. पाठः।
३. अव्ययात्मनदेहेभ्यो नतिरस्तु तनुर्मम, इति न.सं.पु.पाठः।
४. शृणुत प्रभो, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

निशम्य वचनं तस्य पितरो जातमर्षिणः । अञ्जो निर्व्यञ्चनामर्षाः प्रणम्योचुस्तमादृतम् ॥१२॥

पितर ऊचुः

स्वागतं भो मुनिश्रेष्ठ कुशलं तेऽस्ति वर्ष्मसु । येनोत्सृष्टं जगत्सर्वं तस्मै धात्रे नमो नमः ॥१३॥

अहो जातं महत्कष्टं विधातुर्वचनाद्धि नः । कथं दद्मः[४] सुते ताभ्यां स्थावराभ्यां मुनीश्वर ॥१४॥

स्थावरो निश्चलः कुष्ठी काणः खञ्जो रुजान्वितः । बधिरो गुणहीनश्च मूको नपुंसकस्तथा ॥१५॥

पिङ्गाक्षः केकरो मूढो न्यूनाधिकाङ्गिनौ पुनः । परजातिरजातिश्च स्वगोत्री पिशुनस्तथा ॥१६॥

एभ्यः कन्या न दातव्या धीमता भद्रलिप्सुना । अनिषेध्यान्महद्वाक्याद् ब्रह्मणो वचनादपि ॥१७॥

नैव दद्मः सुते ताभ्यां प्रतियातु मुनीश्वर । क्षमस्वाद्य न आगांसि धात्रे मुदेति वर्ण्यताम् ॥१८॥

स्कन्द उवाच

पितृणां वचनं श्रुत्वा प्रत्यागत्य विधेः पदम् । अवर्णयद्धि तद्वार्त्तां ब्रह्माणं नारदो नमन् ॥१९॥

समाकर्ण्य ततो ब्रह्मा नारदाननसम्भवम् । पितृणां तच्च वृत्तान्तं चुकोप तान्प्रति प्रभुः ॥२०॥

अन्तःकोपं समाधाय शैलं प्रति व्रजन् विधिः । पक्षतीश्च ससर्जाजो नगानां सहसा रुषा ॥२१॥

हिमालयस्य संसृज्य सुमेरोश्चान्तिकं ययौ । सृज्यमाने विधौ पक्षं मेरोस्तत्रमाययुः सुराः ॥२२॥

देवा ऊचुः

विभुना मैव कर्तव्यः[५] पक्षो गिरेः कदापि न । लोका भ्रश्यन्ति चैतस्मात्सपक्षचलनाद्यदि ॥२३॥

---

कार्तिक स्वामीले भन्नुभयो – नारदको यस्तो कुरा सुनेर पितृहरू पहिले अत्यन्त रिसाए र पछि रीस शान्त भएपछि सादर प्रणाम गरेर नारदलाई भन्न लागे ॥१२॥

पितृहरूले भने – हे मुनि ! तपाईंलाई स्वागत छ। के तपाईंलाई आरामै छ ? जसले सम्पूर्ण संसार सृष्टि गरेको छ त्यस्ता ब्रह्माजीलाई बारम्बार नमस्कार छ। हे नारदजी ! ब्रह्माजीको कुरा सुनेर हामीहरूलाई ठूलो पीर प¥यो। हामी कसरी त्यस्ता स्थावर अर्थात् अचल पर्वतलाई छोरीहरू दिन सक्छौं र ? ॥१३–१४॥

आफ्नो कल्याण चाहने बुद्धिमान्ले स्थावर, निश्चल, कुष्ठरोगी, कानो, खोरण्डो, रोगी, बहिरो, केही गुण नभएको, लाटो, नपुंसक, कुहिरो, किङ्कर आदि अङ्गहीन (सुमेरु) र अधिकाङ्ग (हिमालय), अर्कै जातको, जातै नभएको, सगोत्री, छुल्याहालाई कन्या नदिनू भनेर निषिद्ध गरेको हुनाले ब्रह्माजीले आज्ञा दिए पनि त्यस्तै लक्षण भएका ती पर्वतलाई शास्त्रको वचनअनुरूप हामी छोरी दिन सक्दैनौं। हे मुनीश्वर ! तपाईं फर्कनुहोस्, हामी तिनीहरूलाई छोरी दिँदैनौं । प्रसन्नतापूर्वक हाम्रो अपराधलाई क्षमा गरिदिनुहोस् र ब्रह्माजीलाई पनि हाम्रो यस अपराधबारे सबै कुरा बताइदिनुहोस् ॥१५–१८॥

कार्तिकेय स्वामीले भन्नुभयो – उनीहरूको त्यस्तो वचन सुनेर नारदजी फर्किएर ब्रह्मलोक जानुभयो र प्रणाम गर्दै ब्रह्माजीलाई पितृगणको त्यो सन्देश सुनाउनुभयो। नारदजीबाट त्यस्तो कुरा सुनेर सर्वसमर्थ ब्रह्माजी पितृहरूसँग क्रोधित हुनुभयो । त्यसपछि उहाँले भित्रभित्रै रीस नियन्त्रण गर्नुभयो र पितृहरूप्रतिको रीसले गर्दा स्वयं पर्वतहरू भएको ठाउँमा गई ती पर्वतहरूका पखेटा सृष्टि गर्नुभयो। हिमालयको पखेटा सृष्टि गरेपछि ब्रह्माजी सुमेरु पर्वतको नजिकै जानुभयो र सुमेरुको पखेटा सृष्टि गर्न लाग्नुभयो। त्यसै समयमा देवताहरू त्यस स्थानमा आए ॥१९–२२॥

देवताहरूले भने – हे ब्रह्माजी हजुरले यस्तो काम नगर्नुहोस्। पर्वतको पखेटा कहिल्यै पनि हाल्नु हुँदैन किनभने पर्वतहरू पखेटा चलाएर हिँडे भने सम्पूर्ण लोक नष्ट हुनेछन् ॥२३॥

---

४. दास्ये, इति न.सं.पु.पाठः।

५. कर्तव्यम्, इति न.सं.पु.पाठः।

निमंक्ष्यति च[६] भूयोऽसौ विभो यत्नोद्भवा रसा। सञ्चरति यदा तत्र रत्नसानुरितस्ततः ॥२४॥

स्कन्द उवाच

देवर्षीणां वचः श्रुत्वा सत्यात्मा हि मुदान्वितः। निववृते विधिर्मेरोः पक्षौ स्रष्टुं तदा मुने ॥२५॥

आलोक्य तादृशं तात पक्षसृष्टिनिवर्तनम्। रत्नसानुर्निपत्याशु दुःखात्माजमुवाच ह ॥२६॥

मेरुरुवाच

मत्पक्षस्थानभित्तात कथमयं प्रवञ्चितः। दुष्टात्मनां सुरर्षीणां मत्वा तथ्यं वचोऽधुना ॥२७॥

यद्येवं मद्विपक्षांस्तान्[७] पातयिष्यामि सर्वशः। मम सान्वोजसो लोकानद्य तेऽज शपे त्वहम् ॥२८॥

ब्रह्मोवाच

मा दुःखी भव[८] शैलेन्द्र पक्षहेतोः कदाचन। अनेन स्थूलदेहेन स्थावरस्त्वं भवाग वै ॥२९॥

सूक्ष्मदेहेन ते मेरो सञ्चरानेन सर्वदा। भ्रंशहेतोश्च लोकानां स्थूलाङ्गं ते निषेधितम् ॥३०॥

अतो हेतोर्वरं दास्ये रत्नसानो हि ते शृणु। ये च त्वामवमन्यन्ते त एव किल्विषान्विताः ॥३१॥

मूर्त्तयोरावयोः पुत्र न भेदोऽस्ति कदाचन। करोति यो विशेषं च मदङ्गघातको भवेत् ॥३२॥

कुशशैल इति ज्ञात्वा भुवनाधार सादरम्। प्रणमन्ति स्म रत्नाङ्ग उद्धरिष्यामि तान् पुनः ॥३३॥

रुद्राच्चर्वकास्तपोनिष्ठा[९] दानधर्म्मोपवासकाः। ईशभक्ताश्च[१०] धर्मिष्ठास्तीर्थस्नानविकिल्विषाः ॥३४॥

सत्यधर्मपराः शान्ता दयादानोत्सुकाः सदा। भक्ता शक्तेश्च[११] विष्णोश्च रुद्रस्य च विशेषतः ॥३५॥

त एव त्वयि तिष्ठन्तु भुञ्जन्तु हि सुखानि च। तांस्त्वं प्रपालयाऽजस्रं नानासुखानि भावयन् ॥३६॥

---

पखेटा भएपछि जब यो सुमेरु पर्वत यताउति उड्नेछ त्यसबेला हजुरको परिश्रमबाट सृष्टि भएको यो पृथ्वीलोक जलमा डुब्नेछ ॥२४॥

कार्तिक स्वामीले भन्नुभयो – हे मुनि ! देवता तथा ऋषिहरूको यस्तो वचन सुनेर सत्य आत्मा भएका ब्रह्माजी प्रसन्न हुँदै सुमेरुको पखेटा सृष्टि गर्ने कामबाट निवृत्त हुनुभयो। आफ्नो पखेटा सृष्टि गर्ने काम छोड्न लागेको देखेर दुःखी हुँदै सुमेरु पर्वतले ब्रह्माजीलाई दण्डवत् प्रणाम गरेर भन्न थाले- हे पिताजी ! यी दुष्ट आत्मा भएका देवता र ऋषिहरूले भनेका कुरालाई साँचो मानेर पखेटा सृष्टि गर्ने कामबाट हजुर निवृत्त हुँदा म साह्रै ठगिएँ। हे ब्रह्माजी ! यदि देवताहरू मेरो विपक्षमा आउँछन् भने ती सबैलाई म खसालिदिनेछु। मेरा टाकुराका बलले सबै लोक नष्ट हुनेछन्। यो म प्रतिज्ञा गर्छु ॥२५–२८॥

ब्रह्माजीले भन्नुभयो – हे शैलेन्द्र ! पखेटा प्राप्त नभएका कारणले तिमी कत्ति पनि दुःखी नहोऊ। हे पुत्र ! तिमी यो स्थूल शरीरले अचल भएर बस। तिमी यो सूक्ष्म शरीरले सधैं यताउति घुम। लोक नष्ट हुन्छन् भन्ने भयले तिम्रो स्थूल शरीरमा पखेटा जोड्ने काम निषेध गरिएको हो। हे सुमेरु ! यसैले म तिमीलाई वर दिन्छु, सुन- जसले तिम्रो अपमान गर्नेछन् ती सबै पापी हुनेछन् ॥२९–३१॥

हे पुत्र ! शरीरधारी तिमी र ममा कुनै भेद छैन। जसले भेद गर्नेछ, त्यो मेरा अङ्गको घातक (ब्रह्मघाती) हुनेछ। जसले यो कुलपर्वत भुवनाधार हो भन्ने सम्झी आदर गर्दै सुमेरु पर्वतलाई प्रणाम गर्छन् तिनीहरूको म उद्धार गर्नेछु। तपस्वीहरू, शिवजीको पूजा गर्ने व्यक्ति, धर्म र उपवास गर्ने भक्त, धर्मात्मा, तीर्थस्नान गर्ने व्यक्ति, पापरहित पुरुष, सत्यवादी, शान्त, दयालु, दाता, देवीका भक्त, विष्णुभक्तहरू र विशेष गरेर शिवभक्तहरू मात्र सुखभोग गर्दै तिमीमाथि बस्न पाउनेछन्। तिमीले अनेक सुख भोग दिलाउँदै तिनीहरूको पालन गर ॥३२–३६॥

---

६. निमज्जिष्यति, इति न.सं.पु.पाठः। ६ क. ... निवर्तितम्, इति न.सं.पु.पाठः। ७. मद्विपक्षास्ते, इति न.सं.पु.पाठः।
८. मैव दुःखय, इति न.सं.पु.पाठः।
९. तपस्विनोऽर्चका रुद्रम्, इति न.सं.पु.पाठः।
१०. नाभक्तिश्च, इति न.सं.पु.पाठः।
११. देव्या ये भक्तिनो, इति न.सं.पु.पाठः।

ये क्षीणसुकृता[१२] ये च किल्विषाङ्कितदेहिनः। तानेव पुत्र ते सानोः पातयाशु सुनिर्दयम् ॥३७॥
धृतलिङ्गशरीरेण व्रजता पितृमन्दिरम्[१३]। उद्वाह्यतां हि तत्कन्या गच्छ पुत्राधुनानघ ॥३८॥

स्कन्द उवाच

निशम्य वचनं धातुर्मेरुर्मेने कृतार्थताम्। नरदेहं समास्थाय ययौ पैत्रं विवाहितुम् ॥३९॥
श्रुत्वा धातुर्वरं लब्धं मेरुणा स हिमालयः। अतोषयद्विधिं भक्त्या तस्माल्लब्धवरः पुनः ॥४०॥

हिमवानुवाच

ॐ गुणातीताय देवाय नमस्ते त्रिगुणात्मने। प्रपञ्चान्तरसंरूढप्रपञ्चसृष्टये नमः ॥४१॥
अनुग्रहामृतासारैस्तद्वरैर्मां प्रसिञ्चय। लिङ्गकलेवरं मह्यं यथा मेरोः[१४] प्रदीयताम् ॥४२॥

ब्रह्मोवाच

एवमस्तु हि ते पुत्र यथा वदसि तत्तथा। भवतात्कामरूपस्त्वं यत्रेच्छासञ्चरो भव ॥४३॥
कन्यामुद्वाह्यतां पुत्र पितृणां कुलसम्भवाम्। तेऽपि दास्यन्ति ते पुत्रीं तल्लोकं व्रज निश्चितम् ॥४४॥

स्कन्द उवाच

आकर्ण्य वचनं धातुर्हिमवान् हर्षसंयुतः। समाह्वयन् मुनीन् शैलान् तदा स नरदेहधृक् ॥४५॥
नारदप्रमुखैर्ल्लोकैर्हिमवान् गिरिभिः सह। पितृलोकं ययौ शीघ्रमुद्वाहार्थं[१५] मुदान्वितः ॥४६॥
माघसितार्धमासस्य गुरावेकादशीतिथौ[१६]। दृगर्के शुभयोगे च पितरो हि शुभग्रहे ॥४७॥
ददुः स्वर्णाद्रये कन्यां दिव्यां नाम्ना सुलक्षणाम्। तामादाय सहर्षात्मा प्रत्याययौ स्वमालयम् ॥४८॥

---

हे पुत्र ! जसको पुण्य सकिएको छ, जसको शरीरमा पापको चिह्न देखिन्छ तिनीहरूलाई कत्ति पनि दया नगरी तत्काल तिमीले तिम्रा शिखरबाट खसालिदिनेछौ। हे पुत्र ! हे निष्पाप ! सूक्ष्म (लिङ्ग) शरीर धारण गरेर शीघ्र पितृलोकमा गएर ती पितृकन्यासित विवाह गर ॥३७–३८॥

कार्तिकेयले भन्नुभयो – ब्रह्माजीका यस्ता वचन सुनेर सुमेरुले आफूलाई कृतकृत्य सम्झिए र मानिसको शरीर धारण गरेर विवाहका लागि पितृलोकमा गए। सुमेरुले ब्रह्माजीबाट वर पाएको कुरा सुनेर खुसी हुँदै हिमालयले पनि भक्तिपूर्वक ब्रह्माजीलाई सन्तुष्ट गराए र ब्रह्माजीबाट वर पाएपछि भक्तिपूर्वक स्तुति गर्न लागे ॥३९–४०॥

हिमालयले भने – तीनै गुणले रहित भएर पनि त्रिगुणस्वरूप आत्मा भएका, प्रपञ्चभित्र प्रवेश गरेका र प्रपञ्च (सृष्टि) विस्तार गर्ने हजुरलाई नमस्कार छ। अनुग्रहरूपी सुधावर्षाको वरले मलाई पनि सेचन गर्नुहोस्। मलाई पनि सुमेरु पर्वतलाई जस्तै सूक्ष्म शरीर दिनुहोस् ॥४१–४२॥

ब्रह्माजीले भन्नुभयो – हे पुत्र ! तिमी जे भन्छौ, त्यस्तै होस्। तिमी कामरूपी अर्थात् जस्तो रूप लिन मन लाग्यो, उस्तै रूप लिन सक्ने होऊ, जहाँ जाने इच्छा हुन्छ, त्यहाँ पुग। हे पुत्र ! तिमीले पितृका कुलमा उत्पन्न भएकी कन्या विवाह गर। तिमी पितृलोकमा जाऊ, उनीहरूले तिमीलाई अवश्य छोरी दिनेछन् ॥४४॥

कार्तिक स्वामीले भन्नुभयो – ब्रह्माजीको यस्तो वाणी सुनेर प्रसन्न भएका हिमालय मनुष्यशरीर धारण गरेर विवाह गर्नका लागि नारद आदि ऋषिहरू र पर्वतहरूका साथ पितृलोक गए। पितृहरूले पनि माघ महिना आधाआधी हुँदा शुक्ल पक्षको एकादशीका दिन बृहस्पतिवार, उत्तम दृगर्क र शुभग्रह भएको लग्नमा असल लक्षणले युक्त भएकी दिव्या नामकी कन्या सुमेरु पर्वतलाई दिए। सुमेरु पनि कन्या लिएर खुसी हुँदै आफ्नो घर फर्किए ॥४५–४८॥

---

१२. क्षीणसुकृतिनो, इति न.सं.पु.पाठः।
१३. पितृलोके व्रजन् ध्रुवम्, इति न.सं.पु.पाठः।
१४. नद्य मेरोर्यथा, इति न.सं.पु.पाठः।
१५. शीघ्रमुद्वाहितुम्, इति न.सं.पु.पाठः।
१६. एकादशीयुते गुरौ, इति न.सं.पु.पाठः।

राधशुक्लार्धमासस्य त्रयोदश्यां गुरौ दिने। रेवत्यां शोभने योगे गुरावुच्चासनस्थिते[१७] ॥४९॥
सङ्कल्प्य विधिवत्कन्यां मेनाख्यां पितरः पुरा। ददुर्हिमवतेऽगस्त्य सधेनुस्वर्णदक्षिणाम् ॥५०॥
शतं पारिषदाः कन्याः सुमुख्यः समलङ्कृताः। स्वाङ्गजायै ददौ दाता दायस्वर्णपलायुतम् ॥५१॥
प्रददुः पितरोऽगस्त्य जामात्रे स्वाशिषं पुनः। तन्मूर्धानं करैः स्पृष्ट्वा संसदि त्रिविधोक्तिभिः[१८] ॥५२॥

पितर ऊचुः

चिरञ्जीव्याः सुखं पुत्र यावदस्ति च मेदिनी। शैलराजो महाबाहुर्ल्लोकदयानिधिर्भव ॥५३॥
सर्वलोकाश्रयो वत्स सर्वलोकार्च्चितो भव। यत्र प्रस्रवणं[१९] तोयं त्वत्तस्तीर्थं भविष्यतु ॥५४॥
स्थास्यन्ति त्वयि यावद्धि जीवास्ते हि चतुर्विधाः। सर्वैनोभिर्विनिर्मुक्ताः यास्यन्त्यन्ते परां गतिम् ॥५५॥
ये नरास्त्वयि तिष्ठन्ति ह्यपि ज्ञानैर्विवर्ज्जिताः। लप्स्यन्ते हि[२०] परां मुक्तिममुत्र योगदुर्ल्लभाम् ॥५६॥
अविधवा भवार्ये त्वं पत्युः सुप्रेयसी भव। बहुपुत्रवती भूया अजरा चामृता भव ॥५७॥
देवर्षिवन्दिता मान्या भवेन वन्दिता भव[२१]। सर्वलोकदयात्मा त्वं तद्रक्षिणी[२२] भवानिशम् ॥५८॥

स्कन्द उवाच

इति दत्वाशिषं ताभ्यां मानयन्तश्च तां[२३] बहु। प्रास्थापयन् ते पितरः स्वलोकान् दत्तभोजनाः[२४] ॥५९॥
आदाय हिमवान् पत्नीं पार्षदैः सह हर्षयन्। प्रत्याययौ स्वकं स्थानं व्योमकूटं सुमङ्गलैः ॥६०॥

---

हे अगस्त्य! पितृहरूले वैशाख महिनाको आधाआधी हुँदा शुक्लपक्षको त्रयोदशीका दिन बृहस्पतिवार, रेवती नक्षत्र, शोभन योग र बृहस्पति उच्च भएको लग्नमा विधिपूर्वक सङ्कल्प गरेर हिमालयलाई गाई र स्वर्ण दक्षिणासहित मेना नामकी कन्या दिए। पितृले मेनाको सेवा गर्नका लागि सुन्दर गहनाले विभूषित सुन्दर मुहार भएका एक सय सेविका कन्या र दस हजार पल (४० हजार तोला) सुन दाइजो पनि दिए ॥४९-५१॥

हे अगस्त्य! त्यसपछि पितृहरूले सभामा हातले उनीहरूको शिर मुसारेर आफ्ना ज्वाइँहरूलाई तीन पटक उच्चारण गरेर आशीर्वाद दिई पितृहरू भन्न लागे ॥५२॥

पितृहरूले भने – हे पुत्र! जबसम्म समुद्र र पृथ्वी रहन्छन् तबसम्म तिमी चिरञ्जीवी होऊ। लामा हात भएका तिमी पर्वतका राजा बने र सबै लोकलाई दया गरी दयानिधि भए। हे वत्स! तिमी तीनै लोकको आधार बन। तीनै लोकका पूज्य होऊ। जति जल तिम्रो शरीरबाट बग्नेछ, ती सबै तीर्थ हुनेछन्। तिमीमाथि चारप्रकार मध्येका जति प्राणीहरू बस्नेछन् तिनीहरू सम्पूर्ण प्रकारका पापबाट मुक्त भएर परम गतिमा पुग्नेछन्। जति मानिसहरू तिमीमाथि बस्नेछन् अज्ञानी (मूर्ख) भए पनि ती सबैले योगसाधनाद्वारा नपाइने परम मोक्ष पाउनेछन् ॥५३-५६॥

हे पुत्री! तिमी सधैँ सौभाग्यवती भए, पतिकी प्यारी भए, धेरै सन्तानकी आमा भए, अजर तथा अमर बने। तिमीहरू दुवै देवता र ऋषिहरूद्वारा पूज्य र शिवजीद्वारा पनि सम्मानित भई सबै लोकमाथि दयालु र तिनीहरूको रक्षा गर्ने बने ॥५७-५८॥

कार्तिक स्वामीले भन्नुभयो – पितृहरूले यस्तो आशीर्वाद दिएर सबैलाई श्रद्धापूर्वक भोजन गराई पार्षदहरूका साथ ती वर तथा कन्यालाई आफ्नो लोकमा पठाए। पार्षदहरूसहित हिमालय पनि पत्नीलाई लिएर खुसी हुँदै मङ्गल गर्दै व्योमकूट नामक आफ्नो स्थानमा फर्किए ॥५९-६०॥

---

१७. गुरुग्रहोच्चसंस्थिते, इति न.सं.पु.पाठः।
१८. त्रिविधोक्तं च संसदि, इति न.सं.पु.पाठः।
१९. यावत्प्रस्रवितम्, इति न.सं.पु.पाठः।
२०. लेभिष्यन्ति, इति न.सं.पु.पाठः।
२१. भवेश्वरेण वन्दिता, इति न.सं.पु.पाठः।
२२. तद्रक्षका, इति न.सं.पु.पाठः।
२३. ताभ्यां पितरश्चाद्रियन्, इति न.सं.पु.पाठः।
२४. प्रास्थापयेत्स्वलोकान्तौ पार्षदैः सह भोजयन्, इति न.सं.पु.पाठः।

अन्वभुङ्क्तां सुखं तौ हि दाम्पत्यजनितं[२५] मुहुः । रतिक्रीडारसैर्युक्तौ तावास्तां दम्पती मुने ॥६१॥
दिव्यपञ्चादशाब्दान्ते प्रत्यायर्यौ पितुगृहे। व्याचष्ट वचनं मेना पितृभ्यः प्रियचेष्टितम् ॥६२॥

मेनोवाच

पितरो मां प्ररक्षन्तु पत्या च[२६] रहितां मुहुः । वोऽङ्घ्रिपद्मानि संसेव्य स्थास्याम्यहममुत्र वै ॥६३॥
मयैकान्ते प्रियस्तात न तिष्ठति मनागपि । सहर्षेण ममास्यं च न प्रेक्षति भयाकुलः ॥६४॥
प्रेमा तस्य कुदासीषु[२७] तस्य प्रियतमा हि ताः । न मुञ्चति क्षणं ताश्च क्रमशः खल्वहर्निशम् ॥६५॥

स्कन्द उवाच

इत्याकर्ण्य वचोऽगस्त्य दुहितुः पितरस्तदा । अमर्षैः पूरिताः सद्यः शप्तुमारेभिरे गिरिम् ॥६६॥

पितर ऊचुः

दास्यो भूत्वा सुते तास्त्वामवमानन्ति या यतः । तासां यावत् प्रसूतिश्च स्थावरा सा भविष्यति ॥६७॥
भविष्यन्तु च ते दास्यः स्वप्रसूतिसमाकुलाः । न प्राप्नुवन्तु[२८] भद्रं ताः प्रियेणापि क्षणं समम् ॥६८॥
यदि दुहितरो[२९] जातास्ता नद्यो भवितार उ । भविष्यन्तु च ते दास्यः शीर्णा दुहितृभिर्यतः ॥६९॥
श्रेष्ठपुत्रप्रसूता त्वं भवितासि तथापराः । लोकवन्द्या भविष्यन्तु तिस्रः पुत्र्यः सुमध्यमाः ॥७०॥
प्रतियातु गृहं पुत्रि यथागतासि तत्तथा । न स्त्रिया स्वगृहेऽस्थेयं पत्या ताडितयाऽपि च[३०] ॥७१॥
सहमाना सदागांसि पत्युस्तिष्ठति तद्गृहे । गोत्रं वसु यशः कीर्तिं प्राप्नुयात् सा[३१] न संशयः ॥७२॥
शिवया सहितं रुद्रं सम्पूजयानिशं सुते । तत्तिथिषु व्रतं कृत्वा[३२] सौभाग्यं लप्स्यसे ध्रुवम् ॥७३॥

---

हे अगस्त्य ! ती दम्पतीहरूले रतिक्रीडाजन्य आनन्द भोग गर्दै धेरै समयसम्म दाम्पत्यसुखको भोग गरेर बसे। दिव्य पन्ध्र वर्षपछि मेना माइत आइन् र आफ्ना बुबाहरूसँग आफ्ना पतिको चरित्र वर्णन गरिन् ॥६१-६२॥

मेनाले भनिन्- हे पिताजी ! पतिले मलाई परित्याग गर्नुभयो, मेरो रक्षा गर्नुहोस् । म तपाईंहरूका पाउको सेवा गरेर यहीं बस्न पाऊँ। हे बुबा ! कहिल्यै पनि मेरा पति मसँग एकान्तमा बस्नुहुन्न र डरले आत्तिएर मेरो मुखमा कहिल्यै पनि खुसी हुँदै हेर्नुहुन्न। उहाँ दासीहरूसँग प्रेम गर्नुहुन्छ। ती दासीहरू उहाँका अतिप्रिय छन् । उनीहरूलाई रातदिन एकछिन पनि छोड्नुहुन्न ॥६३-६५॥

कार्तिक स्वामीले भन्नुभयो - हे अगस्त्य ! छोरीका यस्तो कुरा सुनेर पितृहरू साह्रै रिसाए र तत्काल पर्वतलाई सराप दिन लागे। पितृहरूले भने - हे पुत्री ! यदि ती दासीहरूले तिमीलाई अपमान गरेका छन् भने तिनीहरूका जति पनि सन्तान हुन्छन्, ती सबै स्थावर मात्र हुनेछन्। ती दासीहरू नदीरूपका आफ्ना सन्तानद्वारा आकुलव्याकु हुनेछन् र तिनीहरूलाई कहिल्यै सुख हुनेछैन। उनीहरू आफ्ना पतिका साथमा बसेर निर्भय भई एकछिन पनि सुखभोग गर्न पाउनेछैनन्। यदि छोरी जन्मे भने ती सबै नदी हुनेछन् र ती नदीहरूले पनि तिनलाई सताउनेछन्। तिमीले नै उत्कृष्ट पुत्र उत्पन्न गर्नेछ्यौ र तिम्रा अन्य तीन पुत्रीहरू पनि लोकमान्य हुनेछन् ॥६६-७०॥

हे पुत्री ! तिमी जसरी आएकी थियौ, त्यसैगरी फर्केर घर जाऊ। आफ्नो पतिले पिटे पनि स्त्रीजाति आफ्नै घरमा बस्नुपर्छ। आफ्ना पतिले जस्तोसुकै दुःख दिए पनि सहन गरेर घरैमा बसे भने तिनीहरूले सन्तान, धन र कीर्ति पाउनेछन्, यसमा सन्देह छैन। हे पुत्री ! उमासहित शिवजीको सधैं पूजा गर्ने गर। शिवजीको तिथि (चतुर्दशी) मा उपवास गर्नाले निश्चय नै सौभाग्य प्राप्त हुनेछ ॥७१-७३॥

---

२५. वरवधूद्भवम्, इति न.सं.पु.पाठः ।
२६. पतिना, इति न.सं.पु.पाठः ।
२७. प्रेमा भवेत्स दासीनाम्, इति न.सं.पु.पाठः ।
२८. लभिष्यन्तु, इति न.सं.पु.पाठः ।
२९. यद्यपि दुहिता, इति न.सं.पु.पाठः ।
३०. पतिना ताडितापि च, इति न.सं.पु.पाठः ।
३१. प्रलभिता, इति न.सं.पु.पाठः ।
३२. व्रतोपोष्यैः, इति न.सं.पु.पाठः ।

स्कन्द उवाच

इत्यादेशं वचः श्रुत्वा पितुर्मेना हितोदितम्। प्रत्याययौ गृहं पत्युः सखीभिः सह सत्वरा ॥७४॥
आदेशेन पितुर्मेना चोपोष्य व्रतमाचरत्। सम्पूज्य शङ्करं भक्त्या जातः कालव्यतिक्रमः[३३] ॥७५॥
एवं पुण्यप्रभावात्सा सरेमे गिरिणा सह। भुक्त्वा राज्यं सुखं भोग्यं कञ्चित्कालं निनाय च[३४] ॥७६॥
सुषुवे सा च मैनाकं कीर्तिमन्तं सुतोत्तमम्। तस्यां कालावसाने च तिस्रः कन्याश्च जज्ञिरे ॥७७॥
अपर्णा चैकपर्णा च तथैकपाटला स्मृता। त्यक्तपर्णा ह्यपर्णा सा एकपर्णाशनापरा ॥७८॥
एकपुष्पाशना चान्या तथैकपाटला स्मृता। महोग्रतपसा युक्ता व्रतेषु तास्तथाविधाः ॥७९॥
ददौ मन्मातरं पूर्वं शूलिने हिमवान् किल। असितायैकपर्णां तां जैगीषव्याय चापराम् ॥८०॥
ताः सुषुवुः शतं दास्यः सहस्राणि क्रमात्सुतान्। मातृभिः स्थापिता यत्र तत्रैव स्थिरतां गताः ॥८१॥
प्रसुषुवुश्च ताः पुत्र्यः कालान्ते च क्रमान्मुहुः। स्रोतोवत्योऽद्रवन् शैलात्सर्वा नद्यो जलाकुलाः ॥८२॥
ताडयन्त्यस्तर्जयन्त्यो गर्हयन्त्यो मुहुर्मुहुः। पावनास्ता भृशं[३५] सर्वा ब्रह्मणो वचनान्मुने।
पितृणां वचनान्नित्यं चतुर्वर्गफलप्रदाः ॥८३॥
दास्योऽवदंश्च पुत्रेभ्यो स्वान्तदुःखाङ्किता मुहुः। ताडयन्त्यस्तर्ज्जयन्त्यः गर्हयन्त्यो मुहुर्मुहुः ॥८४॥
उपदिदिशुः पुत्रांश्च नैकस्मिन्तिष्ठतानिशम्। सञ्चाराल्लभते सर्वं वरं मानञ्च[३६] साहसम् ॥८५॥

---

कार्तिकेय स्वामीले भन्नुभयो – आफ्ना पिताको हितकारक उपदेश सुनेर मेना आफ्ना सँगिनीहरूसँग तुरुन्त पतिका घरमा फर्केर आइन्। पिताको उपदेशअनुसार मेनाले उपवास गरेर व्रत गरिन्, भक्तिपूर्वक भगवान् शङ्करलाई पूजा गरेर केही समय बिताइन्। यसरी गरेको पुण्यको प्रभावले उनी पतिका साथ आनन्दसित रमण गर्न पाइन्। राज्य, सुख र भोग्य वस्तुको भोग गरेर उनले केही समय बिताइन् ॥७४–७६॥

ती मेनाले कीर्तिशाली मैनाक नामक उत्तम पुत्र जन्माइन्। केही दिनपछि नै मेनाको गर्भबाट तीनवटी कन्या पनि जन्मिए। तिनीहरूको नाम अपर्णा, एकपर्णा र एकपाटला रह्यो। तपस्या गर्दा एउटीले सुकेको पात (पर्ण) पनि नखाएको हुनाले अपर्णा नाम भयो भने अर्कीले एउटा पात मात्र खाएकाले एकपर्णा भयो। एउटा पाटला पुष्प (पाडरीको फूल) मात्र खाएकी हुनाले अर्की एक पाटला नामले प्रसिद्ध भइन्। ती कन्याहरूले त्यस्तो उग्र तपस्या गरेको हुँदा उनीहरू ती-ती नामले प्रसिद्ध भए ॥७५–७९॥

सर्वप्रथम हिमालयले मेरी माता (अपर्णा) शिवजीलाई दिनुभयो। अनि एकपर्णा असित नामका ऋषिलाई र एकपाटला जैगीषव्य ऋषिलाई दिनुभयो। ती दासीहरूले एकलाख छोराहरू क्रमैसँग पैदा गरे। ती छोराहरू आमाले जहाँ जहाँ राखे, त्यही स्थलमा नै स्थावर भएर बसे। फेरि तिनीहरूले केही दिनपछि धेरै छोरीहरू उत्पन्न गरे ती सबै नदीहरू भएर पानीले पूर्ण भई पर्वतहरूबाट बग्न थाले। ब्रह्माजीको वचनअनुसार बारम्बार सबैलाई हिर्काउँदै, गाली गर्दै उनीहरूले सबैलाई पवित्र तुल्याए। पितृको आशीर्वचन अनुसार उनीहरू चतुर्वर्ग (धर्म, अर्थ, काम, मोक्ष) फल दिने भए ॥८०–८३॥

मनमा दुःख भएका दासीहरूले छोराहरूलाई बारम्बार कुट्दै, तर्साउँदै, हप्काउँदै, निन्दा गर्दै भने – तिमीहरू सधैं एक ठाउँमा नबस, हिँड्ने-डुल्ने गर। सधैं यताउति हिँड्ने गऱ्यो भने बलियो भइन्छ, फूर्ति आउँछ, अरूको मान्य पनि होइन्छ र सबै प्रकारका अभीष्ट वर पनि प्राप्त गर्न सकिन्छ ॥८४–८५॥

---

३३. कश्चित्कालो व्यतिक्रमत्, इति न.सं.पु.पाठः। ३४. प्रणीयती, इति न.सं.पु.पाठः।
३५. पाविन्यस्तानिशम्, इति न.सं.पु.पाठः। ३६. मान्यञ्च, इति न.सं.पु.पाठः।

एवं संबोधिताः पुत्राः नोचुस्तत्र तथापि ते[३७]। न शक्तिर्विद्यते प्रोचुश्चरितुं ताश्च मातृकाः[३८] ॥८६॥
सम्प्रेक्ष्य तादृशान्पुत्रान् द्रवीभूता दुहितृकाः। दास्योऽभूवंश्च दुःखार्त्ताः पत्यौ चावर्णयन् हि तत् ॥८७॥
निशम्य वचनं प्राज्ञः प्रियाणां हिमवांस्तदा। आश्वासयद्वधूः प्राज्ञः स्नेहेन[३९] मधुरोक्तिभिः ॥८८॥
ततो युगशतान्ते चाभवत् देवासुरं मृधम्। कशिपुर्गिरिमामन्त्र्य युयुधे स[४०] सुरैः सह ॥८९॥
स हिमवान्तदा पक्षी पक्षतिभ्यां समावृणोत्। प्रहन्तुं देवसैन्यं तत् पक्षतिस्थगिताम्बरः[४१] ॥९०॥
आलोक्य देवसैन्यं तं तादृशाद्रिं भयातुरम्। त्राहित्राहीति सम्प्रोच्य तद्विष्णोः शरणं गतम् ॥९१॥
धातः पालक हे विष्णो स्रष्टः संहारकाच्युत। रक्ष रक्षेश नः पापात्कशिपोःपर्वताद्विभो ॥९२॥
स श्रुत्वा वचनं तेषामुत्तीर्णः क्षीरसागरात्। प्रोद्यम्य पौषणं चक्रं प्रोवाच त्रिदशान्हरिः ॥९३॥

विष्णुरुवाच

मा भीयन्तां सुरास्तस्मात्प्रतिकारो भविष्यति। प्रशाम्यति ह्ययं दुष्टः स्ववर्गस्यैव नायकः ॥९४॥
दुष्टानां शासनायाहं साधूनां रक्षणाय च। पृथक् पृथक् च देहेन ह्यवतारं करोम्यहम् ॥९५॥

स्कन्द उवाच

इत्युक्त्वा प्रययौ शीघ्रं पक्षौ छेत्तुं घटोद्भव। नारायणोऽमरैः सार्धं यत्राऽऽसीत्कशिपुश्च सः ॥९६॥
आलोक्य कशिपुः शैलो विष्णुं सुरैः सहागतम्। शीघ्रं दुद्राव[४२] चक्रात्तं जीवास्ते शमनं यथा[४३] ॥९७॥
अवीविशत्स्वकं स्थानं कशिपुर्हिमवान् भयात्। त्राहित्राहीति च प्रोच्य[४४] विभो धातः पितामह ॥९८॥

---

आमाहरूले यसरी भने तापनि ती छोराहरूले हलचल गर्न सकेनन् र हे माता ! हामीमा हिँडडुल गर्ने शक्ति छैन, के गरौँ ? भने। त्यस्ता स्थावर पुत्रहरू र नदीरूप पुत्रीहरूलाई देखेर ती दासीहरू अत्यन्त दुःखी भएर पतिलाई आफ्नो दुःख सुनाए। विद्वान् हिमालयले प्रियतमा दासीहरूको वचन सुनेर आश्वासन दिँदै मीठो बोलीले तिनीहरूलाई सम्झाए ॥८६–८८॥

यस्तैमा एकसय युग बितेपछि देवता र असुरहरूको युद्ध भयो। कशिपु नाम भएको पर्वतले हिमालयसँग सल्लाह गरेर देवताका साथ युद्ध गऱ्यो। पखेटा भएका हिमालयले देवताका सैन्यलाई पखेटाले ढाकिदिए। देवसैन्यलाई प्रहार गर्नका लागि पखेटा फैलाएर सबै आकाश पनि ढाकिदिए। त्यस्तो गर्न लागेका हिमालयलाई देखेर डरले कामेर त्राहि–त्राहि भन्दै चिच्याउँदै देवसेना विष्णुको शरणमा गए भने – हे धाता ! संसारलाई पालन गर्ने हे विष्णु ! सृष्टि तथा संहार गर्ने हे अच्युत ! हे ईश ! पापी कशिपुपर्वतबाट हाम्रो रक्षा गर्नुहोस् ॥८९–९२॥

देवताको त्यस्तो प्रार्थना सुनेर भगवान् विष्णु क्षीर समुद्रबाट उत्रनुभयो र सूर्यले दिएको सुदर्शन चक्र उठाउँदै देवताहरूलाई भन्न लाग्नुभयो ॥९३॥

विष्णुले भन्नुभयो – हे देवता हो ! त्यस दुःखदेखि नडराओ, त्यसको निराकरण हुन्छ, आफ्नो वर्गको नाश गर्ने व्यक्ति झैँ त्यो दुष्ट अब आफैँ नष्ट हुन्छ। म दुष्टहरूलाई दण्ड दिन र सज्जनहरूलाई रक्षा गर्नका लागि समय–समयमा भिन्न–भिन्न शरीर लिएर विभिन्न अवतारमा प्रकट हुन्छु ॥९३–९५॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! यति भनेर देवताहरूलाई साथैमा लिएर भगवान् विष्णु पखेटा काट्न कशिपु भएको ठाउँमा जानुभयो। काललाई देखेर प्राणीहरू भागे झैँ देवताहरूका साथ हातमा चक्र लिएर आउनुभएका विष्णुलाई देखेर कशिपु भाग्यो। हिमालय पनि डराएर हे विभो ! हे धाता ! हे पितामह ! मेरो रक्षा गर्नुहोस् भन्दै भागे ॥९६–९८॥

---

३७. नोच्चरितास्तथापि ते, इति न.सं.पु.पाठः। ३८. मातरः, इति न.सं.पु.पाठः। ३९. आश्वासयद्वधूं प्राज्ञो वचनैर्मधु, इति न.सं.पु.पाठः। ४०. योधयच्च, इति न.सं.पु.पाठः। ४१. स्थगिताम्बरपक्षतिः, इति न.सं.पु.पाठः। ४२. दुद्रुवतुर्हि चक्रात्तम्, इति न.सं.पु.पाठः। ४३. दुद्रुवतुर्हि चक्रान्तं स कृतान्तमिव जीविनः, इति न.सं.पु.पाठः। ४४. प्रोक्त्वा, इति न.सं.पु.पाठः।

शत्रुपक्षगतो यो हि भुङ्क्ते कृच्छ्रं न संशयः[४५]। हिमवन्तं तदेत्युक्त्वा विष्णुश्चुकोप कुम्भज ॥९९॥
क्षीरार्णवमभिद्रुत्य पक्षावुद्दिश्य भूभृतः। चिक्षेप सहसा चक्रं विष्णू रोषान्वितो भृशम् ॥१००॥
चिच्छेद त्वरया पक्षौ हिमवतः सुदर्शनम्। सुनिःशेषं हि तत् कृत्वा विष्णोः करं समाव्रजत् ॥१०१॥
स्तूयमानोऽमरैर्विष्णुः स्वधाम परमं ययौ। त्यक्त्वा चायोधनं देवाः स्वं स्वं लोकं ययुः पुनः ॥१०२॥
पक्षलूनो हि कृच्छ्राङ्गो ब्रह्माणं हिमवान्ययौ। तत्सर्वं वर्णयामास ब्रह्मणे दर्शयन्तनुम् ॥१०३॥
निशम्य वचनं तस्य प्रेक्ष्य शैलं व्यथाङ्कितम्। प्रोवाच तं समाश्वास्य धाता मधुरया गिरा ॥१०४॥
तमेवाराधयाशु त्वं हिमवन् भक्तवत्सलम्[४६]। प्रदास्यति स भक्तेभ्यः स्वान्तेप्सितं न संशयः ॥१०५॥
श्रुत्वा वचो विधातुः स ययौ यत्र हरिः स्थितः। सिद्धरत्नं समादाय पार्श्वस्थैः सह देहधृक् ॥१०६॥
न्यस्योपहारकं विष्णोः पुरतो हिमवान् मुने। परिक्रम्यानमत्पादौ भक्त्या स्तुवन्मुहुर्मुहुः ॥१०७॥
नमो नारायणाजाय दिव्यानां पतये नमः। नाराश्रयाय नन्दाय लोकनायक ते नमः ॥१०८॥
पक्षाभावादहं तात जङ्गमैर्निन्दितोऽचलः। कामरूपः कृतो धात्रा मह्यं देहि वरं पुनः[४७] ॥१०९॥
प्रेक्ष्य भक्तियुतं शैलं नम्रमीप्सितमर्थिनम्[४८]। प्रोवाच भगवान् तस्मै भक्ताय चेप्सितं वरम्[४९] ॥११०॥

विष्णुरुवाच

वत्स ते स्थूलदेहोसौ भवतु स्थावरश्चिरम्। लोकानां भयदोऽजस्रं यत्र कुत्रापि सञ्चरात् ॥१११॥
मा दूयतां गिरे तस्माल्लोकानां रक्षको भव। अनेनाङ्गेन त्वं वत्स कामरूपो भवानिशम् ॥११२॥

---

जसले शत्रुपक्षलाई आश्रय दिन्छ त्यसले यस्तै दुःख पाउँछ भनेर विष्णु रिसाउनुभयो। त्यसपछि डराएर हिमालय क्षीरसागरमा गएर लुके। भगवान्ले क्षीरसागरमा दौडेर गई पखेटालाई लक्ष्य गरी चक्र छोड्नुभयो। सुदर्शन चक्रले तुरुन्त निःशेष हुने गरी हिमालयका पखेटा काट्यो र फेरि भगवान्को हातमा आएर बस्यो। देवताहरूद्वारा स्तुति गरिएका भगवान् विष्णु त्यसपछि आफ्नो वैकुण्ठधाममा जानुभयो। देवताहरू पनि युद्ध छोडेर आ–आफ्नो लोकमा गए ॥९९–१०२॥

पखेटा काटिएर साह्रै कष्ट पाएका हिमालय ब्रह्माजी भएका ठाउँमा गएर आफ्नो शरीर देखाउँदै त्यहाँ भएका सम्पूर्ण वृत्तान्त सुनाए। दुःखी हिमालयको यस्तो वचन सुनेर आश्वासन दिँदै ब्रह्माजीले मधुर स्वरले भन्नुभयो – हे हिमालय ! तिमी भक्तमाथि दया गर्ने उनै भगवान्को आराधना गर। उहाँले भक्तहरूको मनमा इच्छा लागेको वर दिनुहुनेछ, यसमा कत्ति पनि सन्देह छैन ॥१०३–१०५॥

ब्रह्माजीको यस्तो वचन सुनेपछि शरीर धारण गरेर आफ्ना गणहरूका साथ रत्न (जुहारत) हरू लिई हिमालय जहाँ भगवान् बस्नुहुन्थ्यो त्यही स्थानमा गए ॥१०६॥ हे अगस्त्य ! हिमालयले विष्णुको अगाडि कोसेली राखेर बारम्बार परिक्रमा र स्तुति गर्दै उहाँको गोडामा ढोग गरे। हे लोकनायक ! नारायणलाई नमस्कार छ, अजलाई नमस्कार छ, देवताका पतिलाई नमस्कार छ र मानिसका आश्रय तथा सानन्दलाई पनि नमस्कार छ। पखेटा नहुनाले म अरू जन्तुहरूबाट निन्दित भएँ र अचल भएँ। यदि ममाथिअनुकम्पा गर्नुहुन्छ भने ब्रह्माजीले दिएको 'इच्छा अनुसार रूप लिन सक्ने' वर दिनुहोस्। यसरी नम्र भएर प्रार्थना गर्न लागेका भक्तियुक्त हिमालयलाई देखेर भगवान्ले आफ्नो भक्तलाई वर दिने इच्छाले उनलाई भन्न लाग्नुभयो ॥१०७–११०॥

भगवान् विष्णुले भन्नुभयो – हे पुत्र ! तिम्रो यो स्थूल शरीर धेरै दिनसम्म अचल भएर बस्नेछ। किनभने यो स्थूल देह यताउति घुम्दा लोकमा त्रास उत्पन्न हुन्छ। हे पर्वत ! त्यसकारण तिमी चिन्तित नबन, लोकको रक्षक भएर बस। सूक्ष्म शरीरले इच्छाअनुसार रूप लिन सक्ने होऊ ॥१११–११२॥

---

४५. कृच्छ्रं तु स्वकृतञ्च यत्, इति न.सं.पु.पाठः।
४६. हिमवद्भक्तवत्सलम्, इति न.सं.पु.पाठः।
४७. मे कृपयसि तद्वरम्, इति न.सं.पु.पाठः।
४८. नम्रमभ्यर्थनेप्सितम्, इति न.सं.पु.पाठः।
४९. वरं दातुं स्वभक्तिने, इति न.सं.पु.पाठः।

शृणु दास्ये वरं तुभ्यं वरं सर्वमहत्तमम्[५०]। भव भूधरराजेन्द्र चाद्यादि लोकवन्दितः[५१] ॥११३॥
त्वयि तिष्ठाम्यहं नित्यं स्वगणैस्त्रिदशैः सह। विधाता शङ्करः सिद्धास्तिष्ठन्ति सगणर्षिभिः ॥११४॥
सेविष्यन्ते च दिक्पाला[५२] यक्षगन्धर्वदानवाः। त्वयि स्थास्यन्ति नित्यं ता अप्सरसः[५३] स्ववृत्तिकाः ॥११५॥
धर्मेण भूषितः शैलस्त्वमीश्वरेण सर्व्वदा। नाधर्मैरन्वभुंक्तस्त्वं सर्वदेवाश्रयो यतः ॥११६॥
त्वद्दर्शने मद्दर्शने न भेदोऽस्ति कदापि च। मूढः करोति यो भेदं मदङ्गहा भवेद्धि सः ॥११७॥
सर्वाश्रयो गिरिस्त्वं च सर्वदेवमयो ह्यहम्। तौल्येन मान्यते येन स याति परमं पदम् ॥११८॥
गच्छ भूधरराजेन्द्र तप्तुं सानौ स्वके शिवे। आराधय महेशानं स दास्यतीप्सितं हृदि ॥११९॥

स्कन्द उवाच

इति दत्त्वा वरं विष्णुर्हिमवते घटोद्भव। अन्तर्दधे पुनस्तस्मिन्नवात्सीत्स निरन्तरम् ॥१२०॥
छिन्नग्रीवो महाविष्णुर्हिरण्यशेखरे गिरौ। देवासुरार्च्चितोऽजस्रं पितृलोकैर्विशेषतः ॥१२१॥
लब्धवरो गिरीन्द्रोऽसौ प्रत्याययौ हिमालयः। सर्वलोकाः प्रसेवन्ते वसन्तस्तस्य सानुषु[५४] ॥१२२॥
दिव्यवर्षशतान्ते च लब्धवरोऽभवन्महान्। पशुपतेः प्रसादाद् वै दिव्याश्रमपराचलः ॥१२३॥
तदाद्यनन्ताधरमण्डनोऽभूत्तपोमयो लोकफलप्रदोऽसौ।
हिमालयः सर्वसुराश्रयश्च[५५], किलाशुतोषाप्तविभूतिरार्यः ॥१२४॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे हिमालयवरप्रदानं नाम सप्तमोऽध्यायः ॥७॥

---

तिमीलाई सबैभन्दा उत्तम वर दिन्छु, सुन। आजदेखि तिमी सबै लोकका पूज्य पर्वतराज हुनेछौ। आफ्ना गण र देवताहरूले सहित भएर म सधैँ तिम्रा शिखरमा बस्नेछु। ब्रह्माजी, शिवजी र सिद्धहरू पनि ऋषिहरूका साथ बस्नुहुनेछ। दिक्पालहरू, यक्ष, गन्धर्व र दानवहरूले पनि तिम्रो सेवा गर्नेछन्। अप्सराहरू पनि खुसीसाथ आफ्नो व्यवहार (नाचगान) गर्दै तिम्रो शिखरमा आनन्दित भएर वास गर्नेछन्। हे शैलराज ! तिमी ईश्वर र देवताका आश्रयस्थल भएको हुनाले धेरै धर्मात्मा छौ, त्यसकारण तिमीलाई अधर्मले कहिल्यै भोग गर्न पाउनेछैन ॥११६॥

तिम्रो दर्शन र मेरो दर्शनमा कहिल्यै फरक हुनेछैन। जुन मूर्खले तिमी र ममा भेद गर्नेछ, त्यो मेरो हत्यारा हुनेछ। तिमी सबै प्राणीका आश्रयदाता पर्वत छौ, म सबै देवताको आश्रयस्थल छु। त्यसैले (हामी दुईलाई) जसले समान व्यवहार गर्नेछ त्यो परम पदमा प्राप्त हुनेछ। हे पर्वतराज ! तिमी कल्याणदायक आफ्नो शिखरमा तपस्या गर्न जाऊ र शिवको आराधना गर। उहाँले तिम्रो मनमा लागेको इच्छा पूरा गरिदिनुहुनेछ ॥११७-११९॥

कार्तिक स्वामी भन्नुहुन्छ– हे अगस्त्य ! हिमालयलाई यस्तो वर दिएर भगवान् विष्णु अन्तर्धान हुनुभयो र त्यसै पर्वतमा सधैँ वास गर्न लाग्नुभयो। ती हिरण्यशेखर (हिमालय) पर्वतमा शिर काटिएका विष्णु सधैँ बस्नुहुन्छ। देवता, दैत्य र पितृगणहरूले उहाँको विशेष पूजा गर्दछन् ॥१२१॥

यसरी वर पाएपछि हिमालय फर्केर आए। हिमालय पर्वतको शिखरमा सबै प्राणीहरू बसेका छन्, सबैले उनको सेवा गर्दछन्। दिव्य सय वर्ष तपस्या गरेपछि शिवजीको अनुग्रहले श्रेष्ठ वर प्राप्त गरी हिमालय दिव्याश्रमले सम्पन्न पर्वतराज हिमालय बन्न पुगे।भगवान् शिवजीबाट प्राप्त गरेको ऐश्वर्यले गर्दा तपस्वी हिमालय त्यस दिनदेखि पृथ्वीका अलङ्कार, पर्वतशिरोमणि, प्राणीहरूलाई इच्छा लागेको फल प्रदान गर्न समर्थ र सम्पूर्ण देवताहरूका आश्रयस्थल भए ॥१२४॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गत हिमवत्खण्डमा हिमालयलाई वरप्रदान नामक सप्तम अध्याय पूर्ण भयो।

---

५०. सर्वं वरमनुत्तमम्, इति न.सं.पु.पाठः।
५१. लोकवन्दनः, इति न.सं.पु.पाठः।
५२. दिगीशाः खलु सेवन्ते, इति न.सं.पु.पाठः।
५३. त्वयि तिष्ठन्मुदाऽजस्रमप्सरसः, इति न.सं.पु.पाठः।
५४. तत्सानुषु वसन्मुहुः, इति न.सं.पु.पाठः।
५५. सर्वसुराश्रमश्च, इति न.सं.पु.पाठः।

# अष्टमोऽध्यायः

## हिमालयमहिमवर्णनम्

अगस्त्य उवाच

सर्ववित् पार्वतीपुत्र ! विष्णोर्लब्धवरो[1] गिरिः । तपसाऽतोषयद् रुद्रं तस्मै दत्तो वरश्च कः[2] ॥१॥

स्कन्द उवाच

ईश्वरेण वरो दत्तो हिमवते पुरा मुने । तत्सर्वं वर्णयिष्यामि समाहितमनाः शृणु ॥२॥

तपोभिश्च सुकठोरैः स तोषयामास शङ्करम् । व्याचष्ट वचनं चैव हिमवन्तं महेश्वरः ॥३॥

पशुपतिरुवाच

अक्षय्यो भव हिमाद्रे यावद् ब्रह्मा न संशयः । तावत्स्थिरश्चिरं भूया मेरुतुल्यो भवाचल ॥४॥

यावन्न तप्यते लोकैस्त्वयि हैमाचले तपः । न स्थास्यन्ति च तावत्ते मेरौ चापि विकिल्विषाः ॥५॥

तिष्ठाम्यहं पृथग्भूत्वा लिङ्गात्मा त्वयि हेमभृत् । विधाता त्रिदशा विष्णुर्दिक्पास्तिष्ठन्ति सन्ततम् ॥६॥

तिष्ठन्ति मत्प्रिया वन्द्या बहुरूपा गणैः सह । त्वत्सानुषु पृथग्भूत्वा सर्वलोकवरप्रदाः ॥७॥

गन्धर्वाप्सरसः सिद्धा देवर्षयस्तपस्विनः । तव सानुषु तिष्ठन्ति यक्षा रक्षांसि दानवाः ॥८॥

स्थास्यन्ति मानुषा नित्यं त्वत्सानुषु हिमालय । फलमूलाशनैर्द्धान्यैः पोषयंस्तान्प्ररक्षसि ॥९॥

सन्ततं त्वयि ये मर्त्याः प्रतिष्ठन्ति गृहौजसः । उपत्यकासु सानौ वा कूटेषु शिखरेषु वा ॥१०॥

स्थास्यन्ति त्रिदिवे सौख्यात् परिवारैः समन्विताः । त्वयि प्रव्रजिता यावत् तावत् संख्यानुसारतः[3] ॥११॥

---

अध्याय- ८

## हिमालयको महिमाको वर्णन

अगस्त्य ऋषिले भन्नुभयो – हे सर्वज्ञ पार्वतीपुत्र ! भगवान् विष्णुबाट वर पाएका हिमालयले तपस्या गरेर महादेवलाई प्रसन्न बनाएपछि उहाँले उनलाई के वर दिनुभयो ? ॥१॥

कार्तिक स्वामीले भन्नुभयो – हे मुनि ! अघि शिवजीले हिमालयलाई जुन वर दिनुभएको थियो, म त्यो सबै वर्णन गर्नेछु, एकचित्त भएर सुन्नुहोस् । कठोर तपस्या गरेर आफूलाई प्रसन्न तुल्याएपछि शिवजीले हिमालयलाई यसरी भन्न लाग्नुभयो ॥२–३॥

शिवजीले भन्नुभयो – हे हिमालय ! तिमी चिरञ्जीवी होऊ । जहिलेसम्म ब्रह्माजी रहनुहुन्छ, त्यस समयसम्म अविनाशी, अचल र सुमेरुसमान समृद्ध बन । जहिलेसम्म मानिसहरू तिम्रो क्षेत्रमा आएर तपस्या गर्दैनन्, त्यस समयसम्म सुमेरु पर्वतमा रहे पनि तिनीहरू पापरहित हुने छैनन् । हे हिमालय ! म सूक्ष्म शरीरका अनेक रूप लिएर तिमीमाथि बस्नेछु । ब्रह्मा, देवता, विष्णु र दिक्पालहरू पनि सधैं तिमीमाथि रहनेछन् । अनेक रूप लिएर मेरा प्यारा गणहरू पनि सूक्ष्म रूपले तिम्रै शिखरमा बस्नेछन् र सबै प्राणीहरूका लागि वरदाता हुनेछन् ॥४–७॥

हे हिमालय ! गन्धर्व, अप्सरा, सिद्ध, देवता, ऋषि, तपस्वी, यक्ष, राक्षस तथा दानवहरू सबै तिम्रा शिखरमा बस्नेछन् । तिम्रा शिखरमा जो मानिसहरू बस्नेछन्, तिनीहरूलाई फल, कन्दमूल तथा अन्न दिएर पालन गर्दै रक्षा गर । जुन मानिसहरू सधैं गृहस्थी भएर तिम्रा शिखरमा अथवा फेदीमा वा काखमा जति वर्षसम्म बसेर जीवन बिताउनेछन् त्यति वर्षसम्म उनीहरू परिवारसहित स्वर्गमा सुख भोग गरेर बस्न पाउनेछन् ॥८–११॥

---

१. भवेल्लब्धवरो, इति न.सं.पु.पाठः । २. दत्तं वरञ्च किम्, इति न.सं.पु.पाठः ।

३. यावत्तत्संख्ययानुसारतः, इति न.सं.पु.पाठः ।

ये चारोहन्ति ते सानुमपि ज्ञानैर्विवर्ज्जिताः। पदे पदे प्राप्तफला[४] वाजपेयाश्वमेधयोः ॥१२॥
ये तपांसि प्रकुर्वन्ति स्थित्वा त्वत्सानुषु मुहुः[५]। ते धीरा नः प्रलीयन्ते विहाय कष्टसंसृतिम् ॥१३॥
जपार्च्वनरतान्धीरान् कदाचित्त्वयि नः प्रति। उद्धरिष्यामि तान् वत्स व्युत्सर्ज्जयन्[६] हि संसृतिम् ॥१४॥
त्वत्प्रसूतासु यो मर्त्यः नदीषु स्नाति चा[७]सकृत्। आजन्मार्ज्जितपापानि त्यक्त्वाङ्गं त्रिदिवं व्रजेत् ॥१५॥
यासु कासु प्रसूतासु त्वत्तश्चोपत्यकादितः[८]। स्नाताः पर्वसु ते त्यक्ताः सप्तजन्मार्ज्जितैनसा ॥१६॥
दूरात्पश्यन्ति ये च त्वां हिमहेमविभूषितम्। एकाब्दार्ज्जितपापैस्ते विमुच्यन्ते न संशयः ॥१७॥
त्वत्सानुशिखरेऽर्च्चन्ति वसन्तो क्वापि ये जनाः[९]। भक्तिहीनान्[१०] सकृच्चापि उद्धरिष्यामि तान्गिरे ॥१८॥
शैत्या चालकनन्दा च भद्रा हैमवती तथा। गण्डकी शतरुद्रा च भागीरथी च वाग्वती ॥१९॥
हैमवती तथा भद्रा सत्यगङ्गा च कौशिकी। शतरुद्रा तथा शैत्या त्रेतायां च वरप्रदाः ॥२०॥
भागीरथ्यलका नन्दा द्वापरे कलिपूर्वतः। वाग्वती कलिमध्ये च तच्छेषे गण्डकी पुनः ।२१॥
भविष्यन्ति च ता नद्यो लोकेप्सितवरप्रदाः। जीवेभ्यश्च[११] प्रदास्यन्ति मनःस्थं मर्त्यमण्डले ॥२२॥
एताभिर्भूषितस्त्वञ्च सततं च पवित्रितः। शक्त्यावतरणीभिश्च मत्तुल्यात्म[१२]विभूतिभिः ॥२३॥
गच्छ भूधरराजेन्द्र बहुपुत्रयुतो भव। भविष्यति निदानं सत् सम्बन्धे तव मत्कुले[१३] ॥२४॥
एवं लब्धवरो रुद्रात्पूज्योऽसौ हिमवान्सदा। सर्वैर्देवादिभिः सत्त्वैः प्रयतात्मा गिरीश्वरः ॥२५॥

---

जुन मानिसहरू अज्ञानी भए तापनि तिम्रो शिखरमा आरोहण गर्नेछन्, तिनीहरूले पद–पद (पाइला–पाइला) मा वाजपेय र अश्वमेध यज्ञको फल प्राप्त गर्नेछन्। जो धीर पुरुषहरू तिम्रा शिखरमा बसेर तपस्या गर्नेछन्, तिनीहरू दुःखदायक संसारलाई छाडेर हामीमा नै लीन हुनेछन्। हे पुत्र ! तिमीमाथि बसेर हाम्रो जप तथा पूजामा संलग्न धीर पुरुषहरूलाई मैले संसारबाट मुक्ति दिलाउँदै उद्धार गर्नेछु। तिम्री पुत्री भएर जन्मिएका नदीहरूमा जुन मानिसले एक पटकमात्र पनि स्नान गर्नेछ, त्यो व्यक्ति जन्मभरि गरेको पाप नष्ट गरेर शरीरैसमेत स्वर्गमा जानेछ ॥१२–१५॥

हे हिमालय ! तिम्रो कोखबाट उत्पन्न भएका प्रत्येक नदीमा पर्वहरूमा नुहाउने व्यक्तिहरू सात जन्मसम्मका पाप नाश गरेर मुक्त हुनेछन्। जसले टाढैबाट भए पनि हिउँ र सुनले सुशोभित तिम्रो स्वरूपको दर्शन गर्दछन् तिनीहरू वर्षभरि गरेका पापबाट मुक्त हुनेछन्, यस कुरामा कुनै सन्देह छैन। जो मानिसहरू तिम्रो शिखरमा बसेर भक्तिविना नै भए पनि एक पटकमात्रै हाम्रो पूजा गर्दछन् म तिनीहरूको उद्धार गर्नेछु ॥१६–१८॥

शीतल जल भएकी अलकनन्दा, भद्रा, हैमवती, गण्डकी, शतरुद्रा, भागीरथी, वाग्मती, हैमवती, भद्रिका, सत्यगङ्गा, कौशिकी, शतरुद्रा र शैत्या नदी त्रेता युगमा वरदायिनी हुनेछन्। कलिभन्दा पहिले द्वापरयुगमा भागीरथी र अलकनन्दा नदी वरदायिनी हुनेछन्। कलियुगको मध्यमा वाग्वती वरदायिनी हुनेछन्। कलिको अन्त्यमा गण्डकी नदी वरदायिनी हुनेछन्। ती नदीहरूमा स्नान गर्ने प्राणीहरूलाई ती सबै नदीहरूले चाहेको वर दिनेछन्। मजस्तै आत्मशक्तिका विभूतिस्वरूप अनि आफ्ना सन्ततिस्वरूपका नदीहरूले सुहाएका तिमी सदा पवित्र रहनेछौ। हे पर्वतराज ! जाऊ, धेरै पुत्रका पिता होऊ। तिम्रो र मेरो यस भेटघाटले तिमीसँग मेरो कुलको सम्बन्ध गराउनेछ। यसरी भगवान् शिवजीबाट वर पाएका हिमालय सम्पूर्ण देवता र प्राणीहरूका लागि पूज्य र पवित्र नगाधिराज भए ॥१९–२५॥

---

४. फलप्राप्ता, इति न.सं.पु.पाठः। ५. त्वत्सानुषु वसन्मुहुः, इति न.सं.पु.पाठः। ६. उत्सर्जयन्, इति न.सं.पु.पाठः।
७. श्रायते हिमवन्, इति न.सं.पु.पाठः। ८. त्वत्तश्चोपत्यकादपि, इति न.सं.पु.पाठः। ९. कदाचित्प्रवसंश्चनः, इति न.सं.पु.पाठः।
१०. अभक्तिनः, इति न.सं.पु.पाठः। ११. तज्जीविभ्यः, इति न.सं.पु.पाठः। १२. मत्समाष्टभिः, इति न.सं.पु.पाठः।
१३. सम्बन्धं त्वयि मत्कुलम्, इति न.सं.पु.पाठः।

अगस्त्य उवाच

देवैरध्यास्यमानोऽसौ हिमवान्भूधरेश्वरः। वरैः संफलितः सम्यक् ब्रह्मविष्णुमहेश्वरैः ॥२६॥

हिमवत्यचले स्कन्द तच्छेखरौजसो नराः। विमुक्ता इह संसारे सफलाः के च ते[१४] वद ॥२७॥

स्कन्द उवाच

आकणर्य घटोद्भूत विमुक्ता मानुषाः पुरा। तद्वृत्तान्तं प्रवक्ष्यामि हिमवदचलौकसः ॥२८॥

कश्चिदाकरजीवी च करङ्गो नाम विश्रुतः। परिवारान्वितो म्लेच्छो भ्रमति स्माऽचलं प्रति ॥२९॥

धातूनन्वेषयन् शश्वद् हिमवन्तं समाययौ। आजन्मकिल्विषात्माऽसौ दानधर्मविवर्ज्जितः ॥३०॥

यत्रोद्भूता यशोधारा नीलकण्ठाद्धि पश्चिमे। त्रियोजने विदूरे स हेमकूटगिरिं ययौ ॥३१॥

यत्र द्रव्येश्वरं लिङ्गं कुण्डमध्ये विराजितम्। शुद्धस्फटिकलिङ्गेशं घर्मक्लिन्नद्रवाप्लवम् ॥३२॥

गणेनाऽऽराधितं पूर्वं तपस्थेन ममेर्ष्यया। तत्माल्लब्धगणाध्यक्षो देवर्षिदैत्यवन्दितः ॥३३॥

यशोधाराजलं[१५] म्लेच्छस्तृषार्त्तो हि मुहुः पपौ। धौतकराननांघ्रिश्च मूर्ध्नि सिक्त्वाऽशु तज्जलैः ॥३४॥

अजहाद् भुवि टङ्कानि क्षीणो रौद्रपरिश्रमः। नदीतीरे क्षणं श्रान्त्वा निर्झरोत्पतने हि तत् ॥३५॥

अद्रिं हिरण्मयं प्रेक्ष्य भृत्यानवोचदाशु सः। हर्षजडाङ्गमोहोऽसौ वचनैर्गद्गदैरपि[१६] ॥३६॥

श्रावणे सितपक्षस्य चतुर्दश्यां क्षुधातुरः। पूर्वाह्णे शीतदुःखार्त्तश्चान्नाभावाद् घटोद्भव ॥३७॥

---

अगस्त्य ऋषिले भन्नुभयो - देवताहरूको वासस्थान भएका पर्वतराज हिमालय ब्रह्मा, विष्णु र शिवजीद्वारा प्राप्त भएको वरबाट निकै समृद्ध भएका छन्। हे कुमारजी ! हिमालय पर्वतका शिखरमा बसी तपस्या गरेर पुण्यमय ओज प्राप्त गरेका को-को मानिसहरू पापमुक्त भए र र को सांसारिक ऐश्वर्य प्राप्त गर्न सफल भए ? त्यो सबै मलाई बताउनुहोस् ॥२६-२७॥

कार्तिक स्वामीले भन्नुभयो - हे अगस्त्य ! हिमालयमा बस्ने जो जो प्राणीहरू मुक्त भए, तिनीहरूको वृत्तान्त म बताउँछु, सुन्नुहोस्। कुनै समयमा खानीको काम गर्ने एक करङ्ग नामक म्लेच्छ सपरिवार त्यस पर्वतमा घुम्दथ्यो। जन्मदेखि नै पापैपापले ग्रस्त भएको, दानधर्म केही पनि नगर्ने त्यो करङ्ग एकपटक हिमालयमा आइपुग्यो ॥२८-३०॥

करङ्ग जहाँबाट यशोधारा (गण्डकी) नदी निस्केकी छन्, नीलकण्ठ पर्वतदेखि बाह्रकोस पश्चिमतिररहेको त्यसै हेमकूट पर्वतमा गयो। त्यहाँ रहेको कुण्डको मध्यभागमा हिउँ पग्लिँदा तयार भएको र जलमा डुबेर रहेको द्रव्येश्वर नामक निर्मलस्फटिक लिङ्ग छ। मेरो ईर्ष्यावश मेरा भाइ गणेशले आफ्ना गणका साथ त्यसै लिङ्गको आराधना गरेर तपस्या गरेका हुनाले त्यसै तपस्याको परिणामस्वरूप उनले देवता, ऋषि र दैत्यहरूद्वारा सम्मानित गणाध्यक्ष (गणेश) भन्ने पदवी प्राप्त गरेका थिए ॥३१-३३॥

धेरै तिर्खाएको त्यस करङ्गनामक म्लेच्छले यशोधाराको जल धेरै पटक पियो र त्यस जलले हात, मुख र पाउ धोएर शिरमा छिट्येछिट्ये सेचन पनि गऱ्यो। कडा परिश्रमले गर्दा थकित त्यस करङ्गले हतियारहरू भुइँमा बिसायो र झरना झरिरहेको नदीको तटमा केही समय विश्राम गऱ्यो ॥३५॥

हे अगस्त्य ! त्यस करङ्गले श्रावण महिनाको शुक्लपक्षको चतुर्दशीका दिन मध्याह्नमा परिश्रम र जाडोले गर्दा दुःखी र अन्न नहुनाले भोकले अति नै पीडित भएको अवस्थामा पनि सुवर्णमय पहाड देखेर हर्षले जड र मोहले गद्गद हुँदै आफ्ना सेवकहरूलाई तत्कालै केही भन्न थाल्यो ॥३६-३७॥

---

१४. संसारैः प्राप्तफलाश्च के, इति न.सं.पु.पाठः। १५. पयोधराजलम्, इति न.सं.पु.पाठः।
१६. गद्गदोक्तिभिः, इति न.सं.पु.पाठः।

करङ्ग उवाच

अहो भ्रातः प्रिये पुत्र नमन्तः पश्यत द्रुतम्[१७]। हिरण्मयं च शैलेन्द्रं परोपकारिणं वरम् ॥३८॥
अहोभाग्यमनाथानां नोऽद्यैव तत्प्रदर्शनात्। अद्यैव सफलं जन्म बहुपापजुषां खलु ॥३९॥
अदत्तं नः प्रिये विप्रे सकृद्दायं वसु पुरा। तस्माद्धि निर्धनाः क्लिष्य भ्रान्ता तल्लोभभाविताः[१८] ॥४०॥
बहुजन्मसु तल्लब्धं कष्टं सुदुस्सहं मया। कष्टादुद्भ्रान्तमुत्प्रेक्ष्य[१९] श्रीश्वराऽनुग्रहाद्धि नः ॥४१॥
अस्याः प्रभावतश्चाऽहं निधूलितः कृतो जलैः। प्राङ्मनागवशिष्टेन धर्मेणैवात्र[२०] चाऽऽगतः ॥४२॥
यद् यच्च वयमिच्छामो राज्यं वा योगिनां पदम्। समुद्रवलयां क्षोणीं तत्तदीशेन दर्शितम्[२१] ॥४३॥
पश्य पुत्र प्रिये भ्रातस्तेजोनिधिमिमं गिरिम्। अयं पश्चिमपूर्वेषु चोत्तरेषु तथाविधः[२२] ॥४४॥
येषूद्भूताः पुरा नद्यः कौशिक्यो देवमानिताः। येषूद्भूताश्च गण्डक्यस्तानि कूटानि पश्यत ॥४५॥
सर्वं स्वर्णमयं शैलं सहस्रशीर्षशोभितम्[२३]। नानारत्नैः प्रदीप्तं तं नमन्तोऽग्रे हि पश्यत[२४] ॥४६॥

भृत्या ऊचुः

नैवास्माभिश्च शैलेन्द्रो दृष्टः स्वर्णमयो विभो। वृक्षगुल्मोपलैः शीतैर्विभूषितोऽचलेश्वरः ॥४७॥

करङ्ग उवाच

एतैः पूतैर्ज्जलैर्नेत्रे मानात्सम्मार्ज्य तं नमन्। ततः पीत्वा पयः पुत्र पश्यसि हाटकाचलम् ॥४८॥

---

करङ्गले भन्यो – हे भाइ ! हे प्रिया ! हे पुत्र ! यो परोपकारी सुनै सुनको अति उत्तम पर्वतराज हो, यसलाई नजिकैबाट निहुरिएर हेर। आज यस सुवर्णमय पर्वतको दर्शन प्राप्त गर्नाले हाम्रो भाग्य खुल्यो। हामीजस्ता पापीहरूको जन्म आजै सफल भयो। हे प्रिया ! पहिला हामीले ब्राह्मणलाई कुनै वस्तु वा धन दान गरेनौं। त्यसैले हामीले निर्धन भएर दुःख पाएका छौं र लोभले हामीलाई यहाँ भौतारिने गराएको छ। मैले धेरै जन्मसम्म ठूलो कष्ट भोग गरें। अनेक जन्महरूमा धेरै कष्ट पाएर दुःखले घुमन्ते बनेको देखी ईश्वरबाट कृपा भयो। यी नदीको प्रभावले र यसको जलमा स्नान गरेको फलस्वरूप मेरा सबै पाप पखालिए। म निर्मल, निष्पाप भएँ र अघि गरेको अलिकति धर्म बाँकी रहेको हुँदा यहाँ आइपुगें। राज्य वा योगीहरूले पाउने पद अथवा समुद्रसम्मको पृथ्वी, जे-जे हामी चाहन्छौं, ती सबै कुरा प्राप्त गर्ने बाटो हामीलाई ईश्वरले देखाइदिनुभयो ॥३८-४३॥

हे प्रिया ! हे पुत्र ! हे भाइ ! हेर, यो पर्वत तेजैतेजको थुप्रोजस्तो छ। यो पश्चिम, पूर्व र उत्तरतिर पनि उस्तै छ। जहाँ अघि देवताद्वारा पनि सम्मानित कोशी नदीहरू उत्पन्न भएका थिए, जहाँबाट गण्डकीजस्ता नदीहरू उत्पन्न भएका थिए, त्यस्ता हिमशिखरहरूलाई पनि हेर। हजार शिर भएको यो पर्वत सबैतिर सुनैसुनले झकिझकाउ भएको छ। अनेक रत्नहरूले गर्दा उज्ज्वल बनेको यस पर्वतलाई तिमीहरू अगाडि निहुरिएर हेर ॥४४-४६॥

भृत्यहरूले भने – हे मालिक ! हामीहरूले त सुनैसुनको पर्वत देखेनौं बरु चीसा रुख, लहरा, पात, ढुङ्गाहरूले भरिएको पर्वतमात्र देख्यौं ॥४७॥

करङ्गले भन्यो – हे पुत्र ! यो पवित्र जलले आदरपूर्वक आखाँ पुछ, शिरमा मार्जन गर, जलपान गर अनि तिमीले सुवर्णमय पर्वत देख्नेछौ ॥४८॥

---

१७. पश्यत पुरतो नमन्, इति न.सं.पु.पाठः।
१८. निर्धनैः क्लिष्यस्तल्लोभैर्भ्रमिता इह, इति न.सं.पु.पाठः।
१९. कष्यत्तं भ्रमितं प्रेक्ष्य, इति न.सं.पु.पाठः।
२०. धर्मेणेहात्र, इति न.सं.पु.पाठः।
२१. चेश्वरेण प्रदर्शिता, इति न.सं.पु.पाठः।
२२. तत्पश्चिमेषु पूर्वेषु चोत्तरेषु तथाविधम्, इति न.सं.पु.पाठः।
२३. सहस्रशीर्षं जातजम्, इति न.सं.पु.पाठः।
२४. वै पश्य पश्याग्रतो नमन्, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

गणकुण्डोद्भवैस्तोयैरलिपन्पाणिभिश्च ते। पीत्वाऽर्णांसि मुने भक्त्या ददृशुः[२५] पुरतोऽचलान् ॥४९॥
जातरूपमयं शैलं सहस्रशीर्षमग्रतः। मणिरत्नांशुभिर्द्योतमाश्चर्यैरूपशोभितम् ॥५०॥
प्रणेमुस्त्वरितं शैलं सुभक्त्या दण्डवन् मुहुः। यशोधारातटे[२६] म्लेच्छाः कृतार्थं मेनिरे हृदा ॥५१॥
भृत्यान् टङ्कानि सन्त्यज्य एक एवारुरोह सः। जातमयं गिरिं साक्षात् क्षीणो विश्रम्य सानुषु ॥५२॥
आधाय हृदि चेत्येवं नीत्वैतैर्हाटकै रसाम्। सार्वभौमो भविष्यामि जित्वाऽशु क्षत्रियान् क्षितौ ॥५३॥
आरुह्य गिरिसानुं स गणकुण्डं गतो मुने। अपश्यदीश्वरं[२७] कुण्डे जलस्थं स्फाटिकं विधिम् ॥५४॥
ततोऽमरगणं तत्र जलेश्वरप्रसेविनं। अपश्यच्च स नृत्यन्तं[२८] गीतवाद्यमहोत्सवैः ॥५५॥
नृत्यन्तञ्च[२९] समं देवैर्लम्बोदरं महोत्सवैः। अप्सरोगीयमानं च वृषकेतुं सपद्मजम्[३०] ॥५६॥
कुण्डप्रान्तेऽमले तस्मिन् म्लेच्छे प्राप्ते हि रोधसि। पपात पुष्पवृष्टिश्च व्योम्नि वाद्यं ननाद च ॥५७॥
आययुस्तत्र शैवाश्च विमानपाणयोऽम्बरात्। द्योतयन्तो दिशः सर्वा[३१] वैमानिकै रविप्रभैः ॥५८॥
तमास्थाय विमाने ते शैवा व्योमनि शाङ्करम्। चामरैर्द्धूयमानञ्च रुद्रकन्याकरेरितैः ॥५९॥
निन्युः शिवपुरं सद्यो गीतवाद्यमहोत्सवैः। सदेहं द्योतयन्तस्तं[३२] विमानभानुभिर्मुने ॥६०॥
तादृशं तङ्गणा व्योम्नो निन्युर्भृत्यान्पृथक् परम्। शतयुगं सुखं व्याप्य शाङ्करं बुभुजुर्हि ते ॥६१॥
सोऽभवद्धि पृथू राजा रसां सर्वां शशास ह। कृत्वात्मसान्नृपांस्तस्यां गणकुण्डप्रभावतः ॥६२॥

---

कार्तिक स्वामीले भन्नुभयो – त्यसपछि तिनीहरूले भक्तिपूर्वक कुण्डको जल हातमा लिएर मुख धोए, मार्जन गरे, पिए त्यसपछि अगाडि हेर्दा उनीहरूले सुवर्णमय हजारौं शिखर भएको र मणि, जुहारतहरूले झलमल्ल बनेको आश्चर्यलाग्दो रमणीय पर्वत देखे ॥४९–५०॥

यशोधाराको किनारमा बसेका ती म्लेच्छहरूले तत्काल भक्तिपूर्वक दण्डवत् प्रणाम गरे र आफूलाई कृतकृत्य सम्झिए। त्यसपछि त्यो करङ्गले सेवक र ती हतियारलाई त्यहीं छोड्यो। थाकेको हुँदा केहीबेर टाकुरामा विश्राम गर्‍यो। अनि सुन लैजान्छु र यस धन (सुन) को प्रभावले सम्पूर्ण पृथ्वीका राजालाई जितेर चक्रवर्ती राजा हुन्छु भन्ने हृदयमा सोचेर एक्लै सुवर्णपर्वतमाथि आरोहण गर्‍यो ॥५१–५३॥

त्यो म्लेच्छ सुवर्णपर्वतका टाकुरामा चढेर गणकुण्डमा पुग्यो। भाग्यले गर्दा त्यहाँ उसले जलमा डुबेको स्फटिकको शिवलिङ्गको दर्शन गर्‍यो। त्यसपछि त्यस जलभित्र नाचगान आदि ठूलो उत्सवद्वारा जलेश्वर (शिवजी) को सेवा गरिरहेका देवताहरूलाई उसले देख्यो। उसले ब्रह्मा आदि देवताहरूका साथ नृत्य, गीत र वाद्यको उत्सवमा रमाउनुभएका लम्बोदर (गणेश) लाई र अप्सराद्वारा गान गरिएका ब्रह्माजीसहितका वृषकेतु शङ्करलाई देख्यो। त्यो म्लेच्छ निर्मल कुण्डको तटमा पुगेपछि आकाशबाट पुष्पवृष्टि भयो। आकाशमा नगरा (बाजा) बजे ॥५४–५७॥

विमानमा चढेका शिवजीका गणहरू आकाशबाट सूर्यजस्तै चारै दिशा उज्यालो पार्दै त्यस ठाउँमा आए। ती शिवगणहरूले शङ्करस्वरूप त्यस म्लेच्छलाई विमानमा राखे, शिवकन्याहरूले चमर हम्के। गीत, नृत्य, वाद्य आदिद्वारा महोत्सव गर्दै त्यसलाई उनीहरूले सशरीर शिवपुरमा लगे। विमानका किरणले चारै दिशालाई उज्यालो बनाउँदै ती गणहरूले भृत्यहरूलाई पनि आकाशमार्गद्वारा छुट्टै विमानमा राखेर लगे। तिनीहरूले एक सय युगसम्म शिवलोकमा सुखभोग गरे। पछि त्यही म्लेच्छ पृथ्वीमा पृथु नामको राजा भयो र गणकुण्डका प्रभावले गर्दा सारा राजाहरूलाई जितेर सम्पूर्ण पृथ्वीमा शासन गर्‍यो ॥५८–६२॥

---

२५. गगणकुण्डोद्भवैस्तोयैरलेपत् पाणिभिस्ते। पीत्वार्णा भक्तितोऽगस्त्य अद्राक्षुः पुरतो–चलान्॥ इति न.सं.पु.पाठः।
२६. पयोधारातटे, इति न.सं.पु.पाठः।
२७. अदर्शदीश्वर कुण्डे, इति न.सं.पु.पाठः।
२८. अपश्यन्नर्तयन्तं स, इति न.सं.पु.पाठः।
२९. नर्तयन्तं समं देवैः, इति न.सं.पु.पाठः।
३०. वृषकेतुं सपद्मजैः, इति न.सं.पु.पाठः।
३१. प्रोद्योतयंश्चतुर्दिक्षु, इति न.सं.पु.पाठः।
३२. सदेहं द्योतयन्, इति न.सं.पु.पाठः।

तत्रस्था सा शिला दृष्ट्वा[३३] भृत्यांश्च तादृशान् भयात्। निर्ज्जना गमनाशक्ता नदीतीरे रुरोद ह[३४] ॥६३॥
क्रन्दनं रवमाकर्ण्य गणर्षिस्तत्र चाययौ। उपगम्य जटी सौम्यो ब्राह्मणीं समबोधयत्[३४क] ॥६४॥

जैगीषव्य उवाच

दरिद्रपुत्रि मा रोदी[३५] प्राक्पापैस्त्वं प्रपीडिता। तद्धेतोश्च शिले ! पापे ![३५क] प्रागदानैः सुनिर्द्धना ॥६५॥
कथं रोदिषि पापिष्ठे स्वकृतैः कर्शिताधुना। इदानीमपि धर्मं हि संसृतितारकङ्कुरु ॥६६॥

शिलोवाच

एककिनी त्वशक्ताहं पतिपुत्रैर्विवर्ज्जिता। क्व गच्छामीह हा कष्टं मां त्यक्त्वा क्व गताश्च ते ॥६७॥
शून्येऽरण्ये नदीतीरे जलझङ्कारनिस्वने। जन्तुपक्षिसमायुक्ते पतिता निर्ज्जना विभो ॥६८॥
किल्विषैः कर्शिताहं कैर्बहुकृतैः पुराकृतैः। भृत्यानां दोषजैर्वापि यथार्थं वद मे द्विज ॥६९॥

जैगीषव्य उवाच

कृषिकर्त्तुः प्रियासि त्वं दानधर्मैर्विवर्ज्जिता। तस्मादश्रीर्दरिद्रा त्वम[३६]भूर्जन्मनि जन्मनि ॥७०॥
यस्मै कस्मै न दत्तं प्राक् शाकमूलफलं च यत्। स्वकुक्षेः केवलं भर्त्री नादाश्चान्नकणानपि[३७] ॥७१॥
भूत्वाऽवसः शिले क्षेत्रं कलौ च फलरक्षिका[३८]। पत्रिणो वरिताश्चापि जन्तवो लगुडेन च ॥७२॥
रक्षन्त्यां त्वयि तत् सर्वं[३९] काकः कोषैकमग्रहीत्। त्वया शप्तं फलायाशु चामेध्यैः[४०] पूर्यतामिति ॥७३॥
तत्कोषं प्रददौ काकः चित्रगुप्ताय सञ्चितुम्। अन्नं तत्सञ्चितं तुभ्यं शापदायै प्रयच्छितुम्[४०क] ॥७४॥

---

आफ्ना वरिपरि बस्ने करङ्ग र त्यसका भृत्यहरू गएको देखेर एक्लोपनको अनुभवले डराएकी शिला नदी हिंड्न पनि नसकेर अत्यन्त रोइन्। रोएको त्यस्तो आवाज सुनेर शान्त शरीर भएका सुन्दर जटाधारी जैगीषव्य ऋषिले त्यहाँ आएर ती ब्राह्मणीलाई सम्झाए ॥६३-६४॥

जैगीषव्य भन्दछन्- हे दुःखी पुत्री ! तिमी नरोऊ, पहिलेको पापले तिमीले यस्तो दुःख पाएकी छौ। हे पापिनी शिले ! पहिले दान नगरेको हुनाले तिमी दरिद्र भएकी हौ। हे पापिनी ! किन रुन्छ्यौ ? आफ्नै कर्मले दुःख पाएकी छौ, अहिले पनि तिमी संसारसागरबाट पार लगाउने धर्म गर ॥६५-६६॥

शिलाले भनिन्- म एक्ली, पति-पुत्रहरूले त्यागिएकी र अशक्त छु। हा कष्ट ! म कहाँ जाऊँ ? मलाई छोडेर तिनीहरू कहाँ गए होलान् ?। हे प्रभो ! कोही मानिस नभएको एकान्त, शून्य, पानीको छालको आवाज मात्र सुनिने, अनेक जन्तु र पक्षीहरूले व्याप्त यस जङ्गलको माझमा रहेको नदीको तटमा म एक्लै परेकी छु। हे ब्राह्मणदेव ! मैले अघि बारम्बार गरेको के कस्तो पापले दुःख पाएकी हुँ ? अथवा भृत्यहरूको दोषले गर्दा यस्तो भएको हो ? यथार्थ बताइदिनुहोस् ॥६७-६९॥

जैगीषव्यले भन्नुभयो - तिमी किसानकी पत्नी हौ, तिमीले दान धर्म केही गरिनौ। त्यसैले हरेक जन्ममा तिमी दरिद्र भयौ। तिमीले अघिल्ला जन्ममा पनि साग, तरकारी, फलफूल र अलिकति अन्नको कनिकासम्म पनि कहिल्यै कसैलाई दिइनौ, खालि आफ्नो पेट भऱ्यौ। तिमी कलियुगमा उद्यानमा फल रक्षा गर्ने वनपालिका भएर बस्यौ र त्यहाँ फल खान लागेका पक्षीहरूलाई पनि तिमीले धपायौ, त्यस्तै अन्य जन्तुहरूलाई पनि लट्ठीले लघाऱ्यौ। तिमीले त्यसरी बगैँचाको रक्षा गरिरहेको अवस्थामा एउटा कागले एउटा फलको कोसो चुच्चाले टिपेर लग्यो, तिमीले सो फल विष्ठाले भरियोस् भनेर सराप दियौ। कागले त्यो फल चित्रगुप्तलाई जोगाएर राख्न दियो। उनले त्यो फल पछि अनाहकमा सराप दिने तिमीलाई नै दिनका लागि राखे ॥७०-७४॥

---

३३. शिलाऽदर्शद, इति न.सं.पु.पाठः।
३४. चरणाशक्ता नदी रुरोद निर्भरम्, इति न.सं.पु.पाठः।
३४क. तामबोचयत्, इति न.सं.पु.पाठः।
३५. मा रोदीः पुत्रि दारिद्रि, इति न.सं.पु.पाठः।
३५क. तद्धेतोः पापिनि शीले, इति न.सं.पु.पाठः।
३६. तस्माश्री च दारिद्री अभूत, इति न.सं.पु.पाठः।
३७. स्वकुक्षिं केवलं भर्त्री अन्नकणाः मनागपि, इति न.सं.पु.पाठः।
३८. अवसच्छिले क्षेत्रं कलावफलरक्षिका, इति न.सं.पु. पाठः।
३९. त्वयि तद्रक्षमानायाम्, इति न.सं.पु.पाठः।
४०. अमेध्यैः, इति न.सं.पु.पाठः।
४०क. सम्यक् दातुमन्ते पुनर्हि तम्, इति न.सं.पु.पाठः।

त्वद्देहान्ते त्वामनैषुः[४१] संयमनीं यमानुगाः। तृषार्त्ताहं क्षुधार्त्ताहमरोदीरेव निर्भरम् ॥७५॥
भुङ्क्ष्वेति दत्तवांस्तुभ्यं तत्कोषानि यमोऽग्रतः। कोटिगुणं चयं कृत्वा समा[४१क] नीतानि किङ्करैः ॥७६॥
भक्षितुं प्रेक्षितं तानि नखैर्भित्वा पृथक्[४२] पृथक्। अमेध्यैस्तानि[४३] पूर्णानि चाद्राक्षीद् दुःखिता भृशम् ॥७७॥
क्षुत्पिपासाप्रदग्धाङ्गा मग्ना नरकसद्मसु। लक्षाब्दान्ते पुनर्जन्म जातं[४४] जातिषु ते पृथक् ॥७८॥
लक्षाब्दान्ते पुनर्जाता नरयोन्यामियं तनुः। गङ्गायां प्राणत्यागस्य पुण्याद् भृत्यास्त एव हि[४५] ॥७९॥
तेऽपि लब्ध्वा वरं पुण्यान्मत्तीर्थाद्रिप्रभावतः। अदानां त्वाञ्च सन्त्यज्य चारुरुहुर्हिमालयम्[४६] ॥८०॥
मत्तीर्थेऽस्मिन् ध्रुवं स्नात्वा चारुह्यतामयं गिरिः। तत्पदवीं सुनिष्पापां भृत्यान्प्राप्स्यसि ताञ्छिले ॥८१॥

स्कन्द उवाच

एव सम्बोध्य तां विप्र पुण्यमार्गं प्रदर्शयन् ॥८२॥
जैगीषव्यो ययौ तप्तुं वराहर्षिसरोवरम्। यत्र तप्तं वराहेण मुनिशृङ्गेण वै पुरा ॥८३॥
अद्यापि तं न मुञ्चन्ति सिद्धा देवर्षयोऽनिशम्। सिद्धकूटं समारुह्य गन्ता पापैर्विमुच्यते ॥८४॥
ह्रददर्शनमात्रेण वाजिमेधफलं लभेत्। कदाचिद्दैवयोगेन स्नानं करोति मानवः ॥८५॥
सप्तजन्मकृतैः पापैः स मुक्तो नात्र संशयः। समाकर्ण्य शिलागस्त्य जैगीषव्यवचस्तथा ॥८६॥
कृत्वा तथ्यं हृदा तत्र तत्तीर्थं प्रययौ शनैः। जैगीषव्यो जले सस्नौ जम्बूरसैश्च संयुते ॥८७॥
स्नात्वा तीर्थे शिलाऽगस्त्य ह्यारुहद् गिरिशेखरम्। साङ्गा सापि ययौ शैवं यानेन सूर्यवर्चसा ॥८८॥

---

तिमी मरेपछि यमराजका दूतहरूले तिम्रो सूक्ष्म शरीरलाई यमलोक पुऱ्याए। त्यहाँ तिमी "भोक र प्यासले मरेँ, खान पाऊँ" भनेर धेरै रोयौ। यमराजले तिम्रो अगाडि त्यही फल खा भनेर दिए। यमराजका दूतहरूले त्यस फललाई करोडौँ गुणा बनाएर ल्याइदिएका थिए। तिमीले ती फल देखेर खानका लागि नङ्ले छेडायौ, सबै एक-एक गरेर फोऱ्यौ। तिमीले ती सबै फलमा विष्ठा भरिएको देख्यौ र धेरै दुःखी भयौ। भोक-प्यासले पीडित भएकी तिमी नरकमा डुब्यौ। एकलाख वर्षपछि सबै योनिमा भिन्न-भिन्न रूपले तिम्रो जन्म भयो। एकलाख वर्षपछि मात्र तिमी मनुष्य योनिमा पैदा भयौ। अघि मरेका तिम्रा ती भृत्यहरू गङ्गाका तीरमा मरेको पुण्य, वर पाएको मेरो तीर्थ र यस पर्वतका प्रभावले गर्दा दान नगर्ने तिमीलाई यहीँ छोडेर हिमालयमा चढे। तिमी पनि यो मेरो तीर्थमा स्नान गरेर यस पर्वतमा चढ। हे शिले ! पापरहित तिमीले त्यो पदवी र ती भृत्यहरूलाई पनि प्राप्त गर्नेछ्यौ ॥७५-८१॥

कार्तिक स्वामीले भन्नुभयो - जैगीषव्य मुनि ती शिलालाई त्यसरी सम्झाएर धर्मको मार्ग बताई तपस्या गर्न वराह सरोवरमा गए, जहाँ अघि वराहमुनिले तपस्या गरेका थिए। त्यस ठाउँलाई सिद्ध, देवता तथा ऋषिहरूले अझैसम्म पनि छोडेका छैनन्, त्यस्तो सिद्धकूट पर्वतमा जो चढ्छ, त्यो सम्पूर्ण पापबाट मुक्त हुन्छ। त्यहाँको सरोवरको दर्शनले मात्र पनि अश्वमेध यज्ञको फल पाइन्छ भने दैवसंयोगले गर्दा कदाचित् त्यस सरोवरमा कुनै मानिसले स्नान नै गऱ्यो भने त सात जन्मसम्म गरेको पापबाट समेत मुक्ति पाउँछ, यसमा कुनै सन्देह छैन। हे अगस्त्य मुनि ! जैगीषव्य ऋषिको त्यस्तो वचन सुनेर उनको वचनलाई सत्य सम्झी शिला बिस्तारै त्यस तीर्थमा गइन्। जैगीषव्य ऋषिले जमुनाको रसले युक्त भएको त्यस जलमा स्नान गरे। हे अगस्त्य मुनि ! ती शिला पनि गण्डतीर्थमा स्नान गरेर पर्वतको शिखरमा चढिन्। अनि त्यही शरीरले सूर्यजस्तो तेजिलो विमानमा बसेर परिवारसहित शिवपुर (शिवलोक) गइन् ॥८२-८८॥

---

४१. प्रणीतायाम्, इति न.सं.पु.पाठः।
४१क. ह्यतो नीतानि, इति न.सं.पु.पाठः।
४२. नखाभ्यां भिन्द्य तत्पृथक्, इति न.सं.पु.पाठः।
४३. अमेध्यैस्तत्र, इति न.सं.पु.पाठः।
४४ सर्वयोनिषु ते पृथक्, इति न.सं.पु.पाठः।
४५. गङ्गातटे मृतात्पुण्याद्भृत्यास्त एव ते खलु, इति न.सं.पु.पाठः।
४६. आरोहणाद् हिमालयम्, इति न.सं.पु.पाठः।

एवं च बहवो मुक्तास्तत्तीर्थाद्रिप्रभावतः। कोटिमर्त्यगणा भूयो[४७] द्विकोटिपशवस्तथा ॥८९॥
त्रिश्चतुःकोटयो मुक्ताः कृमिकीटादयोऽपि ते[४८]। अपि विवर्जिता ज्ञानैर्हेमभृच्छेखरौकसः ॥९०॥
आरुहन् तद्गिरिं ये ये त्रिविधोत्पत्तयो मुने। सहस्राब्दं तथागस्त्य तत्तीर्थाद्रिप्रभावतः[४९] ॥९१॥
स्वर्गे स्थित्वा मुदा व्याप्य भुञ्जन्तस्ते[५०] सुखं पुरा। मुक्ता लक्षं पुराब्धीशे भस्मपङ्केश्वरे तथा ॥९२॥
अभ्रतुङ्गेश्वरे लक्षं रत्नकोटीश्वरे तथा। कामेश्वरे तथा लक्षं वाग्मतीशे तथा पुनः ॥९३॥
कामरूपे च भस्मेशे सौन्दर्याद्रौ तथा मुने। जलेश्वरे महालिङ्गे हयग्रीवे च लक्षकम् ॥९४॥
बहुरूपेश्वरे लक्षं लक्षं प्रेतासने पुनः। विद्यालिङ्गे महाकूटे विश्वम्भरेश्वरे तथा ॥९५॥
वाराहे शङ्करे लक्षं म्लेच्छरूपेश्वरे तथा। स्वर्णलिङ्गे मुने लक्षं रत्नलिङ्गे च लक्षकम् ॥९६॥
छिन्नग्रीवे महाविष्णौ लक्षं देवपुरेश्वरे। पार्वतीशे तथा लक्षं दुग्धस्तेयेश्वरे तथा[५०क] ॥९७॥
नीलकण्ठेश्वरे लक्षं लक्षं पाशुपतेश्वरे[५१]। पशुपतौ द्विलक्षं स्याद्विमुक्तास्ते सविग्रहाः ॥९८॥
चक्रतीर्थे च शूलेशे हरिक्षेत्रे च लक्षकम्। देवघट्टे तथा लक्षं प्रभातीर्थे च लक्षकम् ॥९९॥
धर्मकूटे तथा लक्षं धर्मनदी यदुद्भवा[५२]। शशापाजः पुरा धर्मं द्रवीभवेति चाद्यतः ॥१००॥
अभ्रकूटे गिरीशाने स्वर्णशृङ्गे त्रिलक्षकम्। हलोत्खाते तथा लक्षं केशवे लक्षकं पुनः ॥१०१॥
स्वर्णनाभमहाकूटे स्वर्णगर्भाचले त्रयम्। द्विलक्षं बद्रिकाशैले केदारे लक्षकद्वयम् ॥१०२॥

---

यसप्रकार त्यो तीर्थ र पर्वतका प्रभावले करोडौं मानिसहरू तथा दुई करोड पशुहरू मुक्त भएका थिए। हेमगिरिशिखरका प्रभावले ज्ञान नभएका ३/४ करोड कीराहरू पनि त्यहाँ मुक्त भएका थिए ॥८९-९०॥

हे अगस्त्य मुनि ! स्वेदज, अण्डज, जरायुज तीन किसिमका प्राणीहरू मध्ये जुन-जुन प्राणीहरू यस पर्वतमा चढे तिनीहरूले हजार वर्षसम्म स्वर्गमा बसेर आनन्दपूर्वक धेरै सुखभोग गरे। अघि एकलाख जीवहरू अब्धीश्वरमा, एकलाख जीवहरू कालेश्वरमा, एकलाख जीवहरू ईशानेश्वरमा मुक्त भएका थिए ॥९१-९२॥

हे अगस्त्य ! अभ्रतुङ्गेश्वरमा एकलाख, रत्नकोटीश्वरमा एकलाख, कामेश्वरमा एकलाख, वाग्वतीश्वरमा एकलाख, कामरूपमा एकलाख, भस्मेश्वरमा एकलाख, सौन्दर्याद्रिमा एकलाख, जलेश्वरमा एकलाख, महालिङ्गमा एकलाख, हयग्रीवमा एकलाख, बहुरूपेश्वरमा एकलाख, प्रेतासनमा एकलाख, विद्यालिङ्गमा एकलाख, महाकूटमा एकलाख र विश्वम्भरेश्वरमा एकलाख जीवहरू मुक्त भएका थिए ॥९३-९५॥

हे मुनि ! यसैगरी वराहतीर्थमा एकलाख, शङ्करतीर्थमा एकलाख, म्लेच्छरूपेश्वरमा एकलाख, स्वर्गलिङ्गमा एकलाख र रत्नलिङ्गमा एकलाख मुक्त भएका थिए। त्यस्तै छिन्नग्रीव महाविष्णुमा एकलाख, देवपुरेश्वरमा एकलाख, पार्वतीश्वरमा एक लाख र दुग्धस्तेयेश्वरमा एकलाख मुक्त भएका थिए। नीलकण्ठेश्वरमा एकलाख, पाशुपतेश्वरमा एकलाख र पशुपतिमा दुईलाख जीवहरू सशरीर मुक्त भएका थिए। यस्तै चक्रतीर्थमा एकलाख, शूलेश्वरमा एकलाख, हरिक्षेत्रमा एकलाख, देवघाटमा एकलाख र प्रभातीर्थमा एकलाख मुक्त भएका थिए ॥९६-९९॥

अघि ब्रह्माजीले धर्मलाई आजबाट जल होऊ भनेर सराप दिनुभएको हुँदा जुन पर्वतबाट धर्मनदी उत्पन्न भएकी थिइन्, त्यस धर्मकूटमा एकलाख जीवहरू मुक्त भएका थिए। अभ्रकूट, गिरीशान र स्वर्गशृङ्गाचलमा तीनलाख, हलोत्खातमा एकलाख, केशवपर्वतमा एकलाख, स्वर्ण नाम गरेको पर्वतशिखरमा र स्वर्णगर्भाचलमा तीनलाख, बद्रिका पर्वतमा दुईलाख र केदारमा दुईलाख जीवहरू मुक्त भएका थिए ॥१०१-१०२॥

---

४७. नित्यम्, इति न.सं.पु.पाठः।
४८. त्रिकोटयः प्रगच्छन्ति चत्वार कृमयः परम्, इति न.सं.पु.पाठः।
४९. तत्रौजसश्च जीविनः, इति न.सं.पु.पाठः।
५०. भुञ्जन्महत्, इति न.सं.पु.पाठः।
५०क. लक्षं दुग्धतपेश्वरे, इति न.सं.पु.पाठः।
५१. पाशुपतेषु लक्षकम्, इति न.सं.पु.पाठः।
५२. यतोद्भवा, इति न.सं.पु.पाठः।

विश्वकूटे महापन्थे स्वर्णद्वारे पृथक्त्रयम्। द्विलक्षं भैरवीशैले द्विलक्षं त्रियुगीश्वरे ॥१०३॥
लक्षत्रयं मानसे च[५३] भद्रायां च त्रिलक्षकम्। लक्षमलकनन्दायां भागीरथ्यां तथा त्रयम् ॥१०४॥
लक्षे कर्णप्रयागे द्वे लक्षे विष्णुप्रयागके। लक्षे रुद्रप्रयागे द्वे तथा ब्रह्मप्रयागके ॥१०५॥
लक्षे देवप्रयागे द्वे व्यासगङ्गाह्वये तथा। लोमाश्रये महालिङ्गे ज्वालामुखीगिरौ त्रयम् ॥१०६॥
विश्वम्भरेश्वरे लक्षं गङ्गाकान्तेश्वरे तथा। त्रिकूटे विमले लक्षं विश्वकेतौ च लक्षकम् ॥१०७॥
जम्बूशैले तथा लक्षं लक्षं श्रीशेखरे तथा[५४]। सूर्य्याद्रौ चन्द्रशैले द्वे चाग्निदीप्ते च लक्षकम् ॥१०८॥
मणिभूमौ लक्षद्वयं[५५] द्विलक्षं चन्द्रशेखरे। अब्धिकूटेश्वरे लक्षं रत्नकूटेश्वरे त्रयम् ॥१०९॥
तप्ताचले त्रयं तत्तु लक्षं भुवनशेखरे। कोटिकोटिनरैर्व्याप्तं भूर्लोकं च घटोद्भव ॥११०॥
भुवर्लोकं तथा स्वर्गं मुनिलोकं कृतान्तकम्। व्याप्तं नैर्ऋत्यकं मर्त्यैर्वारुणं वायुमन्दिरम् ॥१११॥
कौवेरञ्च तथैशानं सूर्यलोकं हिमांशुकम्। नाक्षत्रञ्च महर्लोकं जनलोकं तपस्तथा ॥११२॥
सत्यलोकं पुनर्ब्राह्मं विष्णुलोकञ्च तत्तथा। सम्प्रेक्ष्य त्रिदशा मर्त्यैर्व्याप्तं लोकं स्वकं स्वकम् ॥११३॥
ब्रह्मादयश्च सम्भूय दुःखात्पशुपतिं ययुः।

ब्रह्मोवाच

प्राग्दत्तं भवता नो यद् सर्वं व्यर्थं[५५क] भवेदिह ॥११४॥
जनको जीविनाञ्चाहं पालकोऽयमिति प्रभोः। पूरितानि सदेहैस्तैः सुरसद्मानि मानवैः[५६] ॥११५॥

---

विश्वकूट, महापन्थ र स्वर्णद्वारमा छुट्टाछुट्टै तीन–तीनलाख, भैरवी पर्वतमा दुईलाख, त्रियुगी नारायणमा दुई-दुईलाख, मानसरोवरमा तीनलाख, भद्रामा तीनलाख, अलकनन्दामा तीनलाख र भागीरथीमा तीनलाख जीवहरूले मुक्ति पाएका थिए। यसरी नै कर्णप्रयाग र विष्णुप्रयागमा दुई–दुईलाख, रुद्रप्रयाग र ब्रह्मप्रयागमा दुई–दुईलाख, लोमाश्रय महालिङ्ग र ज्वालामुखी पर्वतमा तीनलाख जीवहरू मुक्त भएका थिए। विश्वम्भरेश्वरमा एकलाख, गङ्गाकान्तेश्वरमा एकलाख, निर्मल त्रिकूटचलमा एकलाख, विश्वकेतु पर्वतमा एकलाख, जम्बूपर्वतमा एकलाख, श्रीपर्वतको शिखरमा एकलाख, सूर्यपर्वतमा र चन्द्रपर्वतमा दुईलाख र अग्निदीप्त पर्वतमा एकलाख जीवहरू मुक्त भएका थिए ॥१०३–१०८॥

हे अगस्त्य मुनि ! मणिभूमिमा दुईलाख, चन्द्रशेखरमा दुईलाख, अब्धिकूटेश्वरमा एकलाख, रत्नकूटेश्वरमा तीनलाख, तप्ताचलमा तीनलाख र भुवनशेखरमा एकलाख जीवहरू मुक्त भए। यसरी करोडौं मानिसहरूले यो भूलोक व्याप्त भयो। भुवर्लोक, स्वर्गलोक, अग्निलोक, यमलोक, निर्ऋतिलोक, वरुणलोक, वायुलोक, कुबेरलोक, ईशानलोक, सूर्यलोक, चन्द्रलोक, नक्षत्रलोक, महर्लोक, जनलोक, तपोलोक, सत्यलोक, ब्रह्मलोक र विष्णुलोकलाई पनि मानिसहरूले ढाके ॥१०९–११२॥

आ–आफ्ना लोकहरूलाई मानिसहरूले व्याप्त गरेको देखेर देवताहरू दुःखी हुँदै विष्णु आदि देवतालाई समेत साथमा लिएर ब्रह्मा पशुपति (शिवजी) का शरणमा पुग्नुभयो र भन्न लाग्नुभयो ॥११३॥

ब्रह्माजीले भन्नुभयो – हामी (दुई)लाई तपाईंले अघि जुन वर दिनुभएको थियो, त्यो सबै प्रयास व्यर्थ भयो। म प्राणीहरूलाई सृष्टि गर्ने र यी प्राणीहरूका पालनकर्ता भन्ने थियो। अहिले सम्पूर्ण देवलोक शरीरधारी मनुष्यहरूले व्याप्त भयो ॥११४–११५॥

---

५३. मानःसरे त्रयं लक्षम्, इति न.सं.पु.पाठः।
५४. श्रीशेखरे च लक्षकम्, इति न.सं.पु.पाठः।
५५. द्वयं लक्षम्, इति न.सं.पु.पाठः।
५५क. व्यर्थयत्नो भवेदिह, इति न.सं.पु.पाठः।
५६. सदेहैः पूरितं मर्त्यैः सुरसद्मानि सर्वशः, इति न.सं.पु.पाठः।

स्नानदानार्च्चनैर्हीनैः पशुपक्षिमृगादिभिः । लक्षाब्दं नो भवेदद्य एवं मर्त्यमयो गिरिः ॥११६॥
भक्तानां ज्ञानिनां स्थाने पूरिताः किल पामराः [५७] ॥

पशुपतिरुवाच

अवश्यं प्राप्यते देवास्तपस्विभिः फलं हि यत् ॥११७॥
लब्धवराचलस्पर्शात् लभन्ते तेऽखिलं पदम्[५८] । मा दूयतां हरेस्तस्मात्प्रतीकारो भविष्यति ॥११८॥
शिवलोकं[५९] प्राप्नुवन्ति हिमवच्छिखरे जनाः । शरीराणि परित्यज्य स्नातका पामरा अपि[६०] ॥११९॥
हिमालये सानुषु वा ये कुर्वन्ति तपः सकृत्[६१] । उद्धरिष्ये सदेहाँस्तान् निर्वाणेन विना कलौ ॥१२०॥

स्कन्द उवाच

पशुपतेर्वचः श्रुत्वा हर्षैः प्रपूरिताः सुराः । ज्योतिर्लिङ्गं नमन्तो हि[६२] परिक्रम्य ययुः स्वकम् ॥१२१॥
तद्दिनात् जीविनः[६३] शैले शरीराणि विहाय[६४] ते । गीर्वाणैः प्रययुः स्वर्गं कृतं विना घटोद्भव ॥१२२॥

शृण्वन्ति धीरा हिमवन्महत्त्वं प्राप्याति कीर्तिं सुयशोऽन्वयन्ते ।
धान्यं धनान्यायुषमाशु भूमौ हैमाचले यत् सुकृतं व्रजेत् तत् ॥१२३॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे हिमालयमाहात्म्यं नाम अष्टमोऽध्यायः ॥८॥

---

स्नान, दान, पूजा, पाठ केही नभएका पशुपक्षी र मृगहरूले सुमेरु पर्वतलाई ढाकेको दिव्य (हाम्रो) लाख वर्ष भइसक्यो। यो पर्वत मनुष्यैमनुष्यहरूले भरिइसक्यो। मुक्त र ज्ञानीहरूले भरिनुपर्नेमा हाम्रा क्षेत्रहरू पामर प्राणीहरूले भरिएका छन् ॥११६½॥

पशुपतिले भन्नुभयो – हे देवता हो ! तपस्वीहरूले तपस्याद्वारा त्यसको फल अवश्य पाउँछन्। वर पाएका पर्वतको स्पर्शले गर्दा त्यसमा बस्नेहरूले पनि स्वर्ग तथा मुक्ति पाउँछन्। हे हरि ! त्यसकारण तपाईंहरू दुःख नमान्नुहोस्, त्यसको प्रतिकार हुनेछ। हिमालयको शिखरमा जे-जति मानिसहरू बस्छन्, ती मूर्ख होऊन् वा ज्ञानी, शरीर छोडेपछि अवश्य शिवलोकमा जान्छन्। जसले हिमालयको शिखरमा गएर एकपटक मात्र भए पनि तपाईंको तपस्या गर्नेछन् म कलियुगमा तिनीहरूलाई जीवन्मुक्ति दिनेछु/उद्धार गर्नेछु ॥११७-१२०॥

कार्तिक स्वामीले भन्नुभयो – पशुपतिको वचन सुनेर अत्यन्त खुसी भएका देवताहरू ज्योतिर्लिङ्ग (शिवजी) लाई प्रणाम गरी आ–आफ्ना लोकमा गए। हे अगस्त्य ! त्यस दिनदेखि सत्ययुगबाहेक अरू युगमा जीवहरू हिमालय पर्वतमा मरेमात्रै भने पनि स्वर्ग जान पाउने भए। ज-जसले धैर्य लिएर यो हिमालयको महात्म्य सुन्दछन् तिनीहरूले यस पृथ्वीमा कीर्ति, सुयश, सन्तान, अन्न, धन र आयु पाउँछन्। जसले हिमालयमै गएर तपस्या गरेको छ त्यसले तुरुन्त ठूलो पुण्य पाउँछ ॥१२१-१२३॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गत हिमवत्खण्डमा हिमालयको महिमावर्णन नामक अष्टम अध्याय पूर्ण भयो।

---

५७. भवन्ति ज्ञानिनो मुक्ताः पामरैस्तेषु पूरितम्, इति न.सं.पु.पाठः ।
५८. संलप्स्यन्त्यालयानि वः, इति न.सं.पु.पाठः ।
५९. अवश्यं ते, इति न.सं.पु.पाठः ।
६०. सन्त्यज्य विग्रहाण्याशु पामराः ज्ञानिनोऽपि वा, इति न.सं.पु.पाठः ।
६१. तपस्विनो हिमशैले तत्सानुषु सकृत्वपि, इति न.सं.पु.पाठः ।
६२. ज्यातिर्लिङ्गं नमन्, इति न.सं.पु. पाठः ।
६३. तदादि, इति न.सं.पु.पाठः ।
६४. विग्रहाणि, इति न.सं.पु.पाठः ।

# नवमोऽध्यायः

## हिमालयमाहात्म्यवर्णनम्

स्कन्द उवाच

लोका अष्टादश क्षुब्धा म्लेच्छपुत्रैः पुरा मुने। बद्रिकेशप्रसादाद्वै केदारानुग्रहात् सुराः [1]॥१॥

नारदस्योपदेशात्ते मुक्ता भागीरथीप्लवात्[2]। लब्धं निर्वाणमाहात्म्यमेतद्धिमवति मुने ॥२॥

अगस्त्य उवाच

कथं संक्षोभितं म्लेच्छैर्देवलोकश्चमूपते। प्रतोषितौ कथं देवौ केदारबद्रिकेश्वरौ ॥३॥

कथं लब्धं हि गङ्गायां सुनिर्वाणञ्च पामरैः। नारदस्योपदेशेन म्लेच्छैस्तदुद्भवं वद ॥४॥

लोमहर्षण उवाच

कुम्भयोनेर्वचः श्रुत्वा मुनयः पार्वतीसुतः। व्याजहार वचस्तस्मै पूर्वोद्भूतकथोत्तरम् ॥५॥

स्कन्द उवाच

च्यवनाश्रमतीर्थेऽङ्ग च्यवने तपसि स्थिते। ययावानायधृक् तत्र वङ्गुनामा च धीवरः ॥६॥

मत्स्याँश्चिक्षेप जालं स समुद्दिश्य वधाय च। अवधीत् कतिचिन्मत्स्यानवमत्य जनानृषीन् ॥७॥

ऋषिनिषेधितं शश्वदश्रुत्वा वचनं हि तत्। रुषाविष्टः शशापाऽशु शूकरो भव पापकृत् ॥८॥

स कोलः सत्यशेषे च भ्रमति स्म वनाद्वनम्। शताब्दान्तेऽगमच्छैलं हिमवत्सानुसुन्दरम् ॥९॥

तत्रावात्सीत्सुखं कोलस्ताम्रकूटाभिधानके। पञ्चयोजनदूरे च देवघट्टोत्तरे स्थले ॥१०॥

---

अध्याय- ९

## हिमालयको अलौकिक माहात्म्यको वर्णन

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! अघि म्लेच्छका सन्तानले बद्रिकेश्वरको वरप्रसाद र केदारेश्वरको अनुग्रहले अठारै लोकमा हलचल मच्चाए। हे अगस्त्य मुनि ! नारद ऋषिको उपदेशअनुसार तिनीहरूले हिमालय पर्वतमा रहेको गङ्गामा शरीर त्याग गरेर महत्वपूर्ण निर्वाण (मुक्ति) पाए ॥१–२॥

अगस्त्य ऋषिले भन्नुभयो – हे सेनानी ! ती म्लेच्छहरूले देवलोकमा कसरी हलचल मच्चाए ? केदारेश्वर र बद्रीश्वरलाई कसरी सन्तुष्ट बनाए ?। ती मूर्ख म्लेच्छहरूले नारदको उपदेशअनुसार कसरी गङ्गामा निर्वाण (मुक्ति) पाए भन्ने स्पष्ट गर्दै तिनीहरूको उत्पत्तिका विषयमा बताउनुहोस् ॥३–४॥

लोमहर्षणले भन्नुभयो – हे मुनि हो ! अगस्त्यको वचन सुनेर कार्तिक स्वामीले अगस्त्यलाई उत्तर दिँदै पहिलेको कथामय प्रसङ्ग सुनाउन लाग्नुभयो ॥५॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य ! च्यवनाश्रम तीर्थमा बसेर च्यवन ऋषि तपस्या गर्न लाग्नुभएको थियो। त्यहाँ बङ्गुनामक कुनै माझी जाल लिएर आयो। त्यस मलाहाले त्यहाँ रहेका मानिस र ऋषिहरूलाई टेर्दै नटेरी माछा मार्ने उद्देश्यले त्यस तीर्थमा जाल हान्यो र ऋषिले बारम्बार निषेध गर्दा पनि उनको भनाइ सुन्दै नसुनी धेरै माछाहरू मार्‍यो। ऋषिले रिसाएर हे पापी ! तँ तुरुन्त सुँगुर भएस् भनेर सराप दिए ॥६–८॥

सत्ययुगको अन्त्यमा त्यो बँदेलरूपधारी मलाहा वनवनै घुम्दथ्यो। सय वर्षपछि त्यो हिमालयको सुन्दर शिखरमा पुग्यो। त्यहाँ गएर देवघाटदेखि बीस कोश उत्तरपट्टि रहेको ताम्रकूट पर्वतको शिखरमा त्यो वराह सुखसित बस्न थाल्यो ॥९–१०॥

---

१. सुराः, इति न.सं.पु.पाठः।

२. गङ्गायां मोक्षमाप्नुयुः, इति न.सं.पु.पाठः।

भाद्रस्य पूर्णिमायां स पूर्वाभाद्रर्क्षसंयुते। सौम्ये प्रातर्दिनेऽगस्त्य ह्रदोत्तमं ददर्श सः ॥११॥
शैलकूटे ह्रदे कोलः प्रपपौ जीवनं सकृत्। मासान्ते दैवयोगाद्धि खादन्मूलफलानि च ॥१२॥
पीतमात्रेण तोयेन सोऽजहात्कोलविग्रहम्। अवात्सीत्तद्गिरौ म्लेच्छः कञ्चित्कालं हि सान्वयः ॥१३॥
आययौ बद्रिकाक्षेत्राद्[३] भिक्षार्थी तद्गृहे जटी। दत्त्वाऽस्पृशद्धि तत्पादौ नीवारान्नं स धीवरः ॥१४॥
तद्बद्रिकारोहणपूतपादसंस्पर्शदूरीकृतकिल्विषोऽसौ।
अद्यप्रभृति तत्पदवीं व्रजे वै सङ्कल्पमाद्यं कृतवान् ह्रदेति ॥१५॥
यूयं रक्षयत पुत्रा[४] भृत्यान्सर्वान् गृहाश्रमम्। ब्रजाम्यहं तपः कर्तुं वृद्धोऽहं[५] यातनाभयात् ॥१६॥
जीविनां बहवः पुत्रा मया हताः सुनिर्दयम्। तत्पापैर्लिप्तदेहोऽहं याम्यं यास्यामि निश्चितम्[५क] ॥१७॥

स्कन्द उवाच

एवं सम्बोध्य पुत्रान्स सन्त्यज्य वसतिं निशि। प्रययौ हिमवच्छैले तद्वारुणोत्तरे स्थिते[६] ॥१८॥
निर्ज्जनः प्रययौ सौम्य चोदासः केशवात्मकः। पर्वतान्स समुत्तीर्य बद्रिकाश्रममाप्तवान् ॥१९॥
सिद्धेश्वरात्मको म्लेच्छ आरोहद् बद्रिकाचलम्[७]। तप्तकुण्डे मुदा स्नात्वा तप्त[८] कुण्डोदकं पपौ ॥२०॥
वैशाखपूर्णिमायां च सोऽद्राक्षीत्परमेश्वरम्। अनमद्दण्डवत्कृत्वा त्रिविधाभिश्च भक्तिभिः[८क] ॥२१॥
विमोहितोऽयं जन ईश मायया मग्नश्च संसारगभीरसागरे।
न सेवते त्वां परमोषधीरसं तथाऽपि मूढो भवता प्ररक्ष्यते ॥२२॥

---

हे अगस्त्य ! पूर्वभाद्रनक्षत्र र सौम्ययोग परेको भाद्रशुक्ल पूर्णिमाका दिन बिहान त्यसले उत्तर दिशामा तलाउ देख्यो। दैवसंयोगले गर्दा त्यस वराहले त्यस पर्वतको शिखरमा अवस्थित तलाउको जल एकपटक पियो र महिनाको अन्त्यमा कन्दमूल फल खायो। खालि त्यहाँको जल पिउनाले त्यो मलाहाले बँदेलको जुनि त्याग गऱ्यो र त्यसै पहाडमा त्यो म्लेच्छ आफ्ना परिवारसहित केही समय बस्यो ॥९-१३॥

जटा धारण गर्ने कुनै भिखारी बद्रिकाश्रमबाट त्यसका घरमा आयो। त्यसलाई उसले वनधानको चामल दिएर चरणस्पर्श गऱ्यो। बद्रिकाश्रममा चढेर पवित्र पाउलाई स्पर्श गरेको हुँदा पापमुक्त भएको त्यस मलाहाले आजदेखि महात्माको पछि लाग्छु भन्ने मनमा सङ्कल्प गऱ्यो र छोराहरूलाई भन्यो – हे बाबु हो ! तिमीहरू यी नोकरलगायत सम्पूर्ण गृहस्थ आश्रमको हेरचाह गर, म बूढो भएँ, नारकीय यातनाबाट डराएर म तपस्या गर्न जान्छु। हे छोरा हो ! कत्ति दया नराखी मैले धेरै प्राणीहरूलाई मारेँ। त्यस पापले मुछिएको यो शरीर निश्चय नै नरकमा पर्छ ॥१४-१७॥

कार्तिक स्वामीले भन्नुभयो – यसरी छोराछोरीलाई सम्झाएर राति नै वासस्थान छोडेर त्यो मलाहा उत्तरतर्फ रहेको हिमालय पर्वतको पश्चिमोत्तर दिशामा विद्यमान पर्वतको शिखरमा गयो। एक्लै उदासी बनी केशव भगवान्लाई मनमा सम्झेर पहाडहरू नाघ्दै त्यो बद्रिकाश्रममा पुग्यो। सिद्धेश्वर भगवान्मा मन लगाएको त्यो म्लेच्छ बद्रिकाचलमा आरोहण गर्न सफल भयो। त्यसपछि उसले अत्यन्त प्रसन्न भएर तप्तकुण्डमा स्नान गऱ्यो अनि त्यसै कुण्डको जल पियो। हे अगस्त्य मुनि ! उसले वैशाख पूर्णिमाका दिन परमेश्वरको दर्शन पाएपछि तीन किसिमका भक्तिद्वारा परमेश्वरलाई दण्डवत् प्रणाम गऱ्यो। हे भगवान् ! हजुरको मायाले मोहित भएर संसाररूपी समुद्रको गहिरो खाडलमा डुबेको यस व्यक्तिले परमौषधिको रसस्वरूप हजुरको सेवा गरेको छैन तापनि हजुरद्वारा यसको रक्षा भइरहेको छ ॥१८-२२॥

---

३. वद्रिकादाययौ कश्चिद, इति न.सं.पु.पाठः।
४. पुत्रा यूयं प्ररक्ष्यास्त, इति न.सं.पु.पाठः।
५. स्यातु वृद्धोऽयम्, इति न.सं.पु.पाठः।
५क. तत्पापैर्लिप्तदेहोऽयं याम्यं यास्यति निश्चितम्, इति न.सं.पु.पाठः।
६. दिशि, इति न.सं.पु.पाठः।
७. म्लेछो वद्रिकाचलमारुहत्, इति न.सं.पु.पाठः।
८. उद, इति न.सं.पु.पाठः।
८क. त्रिविधैर्भक्तितो मुने, इति न.सं.पु.पाठः।

नारायणाय देवाय सिद्धाय शाश्वताय च[९] । परमेशाय नन्दाय परमाय नमो नमः ॥२३॥
परब्रह्मरूपं परं शङ्करेशं शरीरप्ररूढोल्लसद्द्वन्द्वभावम् ।
मनोभिर्वचोभिः शरीरैः सदाऽहं नतोऽस्मीश्वरं तं भजेऽहं परेशम् ॥२४॥
एवं संस्तूयमानं वै निन्युर्यनिन तं गणाः । विष्णुलोकं सदेहं च धारयन्तं चतुर्भुजम्[९क] ॥२५॥
पितुरन्वगमन् सद्यश्चानुरोद्धुं[१०] हि तत्सुताः । हा तातेति च सङ्क्रन्द्य सम्भूय पथि ते ययुः ॥२६॥
भ्रातरोऽष्टादश शैलानुत्तीर्य प्रययुर्वनात् । प्राप्ता रुद्रप्रयागं तु तीर्थं त्वहर्निशं स्थिताः[११] ॥२७॥
सिताष्टम्यां च राधस्य सस्नुः पीतजलोत्तमाः । तेऽपि जहुर्गृहस्थानां प्रत्यागमनमालयम् ॥२८॥
प्राप्तवन्तो हि केदारं व्रजन्तस्ते शनैः शनैः । रुद्रकुण्डजलं स्पृष्ट्वा ते जहुः पूर्वकिल्विषम् ॥२९॥
अपश्यन्परमं लिङ्गं ज्योतीरूपं महाद्भुतम् । मिथः प्रोचुस्तदा म्लेच्छा विहाय शङ्करं विभुम्[११क] ॥३०॥
गृहं नैव गमिष्यामः सेविष्यामहे शमम्[१२] । प्रणम्य दण्डवद् भक्त्या केदारेशं च धीवराः ॥३१॥
तुष्टुवुर्हर्षिता देवं वचोभिर्गद्गदस्वरैः[१३] ।

धीवरा ऊचुः

नताः स्मो महेशं त्रिनेत्रं त्रिरूपं भुजङ्गावलीभूषिताङ्गं परेशम् ।
विभूतिप्रभूतिप्रलेपं प्रतीकं जटाजूटरोचिष्णुशीर्षं भजामः ॥३२॥

---

नारायण देवतालाई, सिद्धेश्वरलाई, नित्यपरमेश्वरलाई, नन्दलाई र परमेश्वरलाई मेरो नमस्कार छ । परब्रह्मस्वरूप, परशङ्करस्वरूप शरीरका आविर्भावमात्रले भिन्न जस्तो ठानिने ईश्वरलाई मन, वचन तथा शरीरले सधैं नमस्कार गर्दछु, त्यस्ता परमेश्वरको म सेवा गर्दछु ॥२२-२४॥

यसरी स्तुति गर्दागर्दै शङ्ख, चक्र, गदा, पद्म धारण गर्ने सौभाग्य पाएको त्यस मलाहालाई नारायणका गणहरूले विमानमा शरीरैसहित राखेर विष्णुलोकमा लगे । रातमा बाबु घरबाट निस्केको हुँदा बाबुलाई खोज्न उसका छोराहरू जम्मा भएर रुँदै कराउँदै बाबा ! बाबा ! भन्दै बाबु गएको बाटोतिर लागे ॥२५-२६॥

ती अठार भाइहरू वन तथा पहाडहरू नाघेर रुद्रप्रयाग पुगे र रातदिन त्यहीँ बस्न थाले । तिनीहरूले त्यहाँ वैशाख महिनाको शुक्लपक्षको अष्टमीका दिन स्नान गरी जल पिए । त्यसपछि उनीहरूले गृहस्थाश्रमको आफ्नो घर फर्कने विचार छोडे ॥२५-२८॥

विस्तार-विस्तार हिँड्दा हिँड्दै उनीहरू केदार पुगे । त्यहाँ पुगेर रुद्रकुण्डको जल स्पर्श गरेपछि तिनीहरूले पहिले गरेका सबै पापलाई त्याग गरे । उनीहरूले अत्यन्त आश्चर्यजनक ज्योतिस्वरूप परमलिङ्गलाई देखे । त्यसपछि केदारेश्वरलाई छोडेर घर नजाऔं, यहीँ बसेर उहाँको सेवा गरौं, यसैमा हाम्रो कल्याण छ भनेर परस्पर विचार-विमर्श गरी ती माझी दाजु-भाइहरूले केदारेश्वरलाई भक्तिपूर्वक नमस्कार गर्दै गद्गद वचनले स्तुति गरे ॥२०-३१½॥

माझीहरूले भने – तीन आँखाले युक्त हुनुभएका, ब्रह्मा, विष्णु र रुद्रस्वरूप, सर्पका मालाले सुशोभित अङ्ग भएका, सर्वोत्कृष्ट खरानी घसेका, सुन्दर शिरमा जुरो बाँधेका महादेवलाई नमस्कार गर्दछौं ॥३२॥

---

९. सिद्धेश्वराय शाश्वते, इति न.सं.पु.पाठः ।
९क. धारयैश्चतुरायुधम्, इति न.सं.पु.पाठः ।
१०. अनुरोधितुम्, इति न.सं.पु.पाठः ।
११. वसन्, इति न.सं.पु.पाठः ।
११क. भ्रातरस्त्यक्तशङ्करम्, इति न.संसपु.पाठः ।
१२. सेविष्यामः शमत्र वै, इति न.सं.पु.पाठः ।
१३. वाग्भिर्गद्गदवादितैः, इति न.सं.पु.पाठः ।

त्रिलोकप्रयाणान्तरङ्गोज्वलाङ्गमलक्ष्येन्दुखण्डाङ्किताकल्पभालम्।
वृषं व्याघ्रचर्मादिनागेन्द्रहारं त्रिशूलं दधानं शिवं तं भजामः[१४] ॥३३॥
रवीन्द्वक्र्कनेत्रैश्च विभ्राजमानं वृषव्यञ्जनं सौम्यरूपं स्मितास्यम्।
हिमाद्र्यात्मजाऽऽलिङ्गनार्धप्रतीकं सदानन्दरूपं परं दिव्यरूपम् ॥३४॥
हृदि ध्यायमानं सतां योगिनां शं[१५] गिरीन्द्रात्मजास्येक्षणप्रोल्लसन्तम्।
तुषारांशुकान्तिप्रकाण्डप्रतीकं प्रपञ्चान्तरालोल्लसच्चित्तवृत्तिम् ॥३५॥
चिदानन्दरूपं विकारोज्झितेशं निरस्तान्धपापाब्धिमग्नोद्भवन्तम्।
षडाधारपद्मोल्लसज्जीवरूपं शरीरान्तरोज्जृम्भितोत्पत्तिचित्तम् ॥३६॥
अनिर्लिप्तमाद्येशमंहोविलुप्तं इडापिङ्गलामध्यमानां हृदिस्थम्[१६]।
प्रपञ्चाङ्गभूतैश्चतुर्भिः स्वरूपैर्मुदा दीप्तमीशं भजेऽहं भजेऽहम् ॥३७॥
सदा ध्येयरूपं मनःपद्ममध्ये सतां योगरूपं च कैवल्यनाथम्।
प्रकाशेक्षणेन्द्वक्र्कवह्निप्रभूतिं महेशं सुरेशं दिनेशस्वरूपम् ॥ ३८॥
यदंशप्रभुस्वर्गलोकप्रपालमभिव्यक्ततेजोनिरस्तान्धकारम्।
जडाबुद्धमूर्खाज्ञमोक्षायनेशं नमस्ते कृपासागरेशाष्टमूर्त्ते ॥३९॥

---

तीनै लोकमा बग्ने गङ्गाजीको तरङ्गले चम्किलो शरीर भएका, नदेखिने सानो चन्द्रमाको खण्डले निधारलाई सुशोभित तुल्याउनुहुने, गोरुमा विराजमान हुनुभएका, बाघको छाला ओढ्नुहुने, नागहरूको माला लगाउनुभएका र त्रिशूल धारण गर्नुहुने महादेवको सधैँ म भजन गर्दछु। सूर्य, चन्द्रमा र अग्निस्वरूप तीन नेत्रले गर्दा अत्यन्त सुशोभित, वृषभवाहन, सौम्य स्वरूपले सुहाउनुभएका, मुसुक्क हाँसिरहनुहुने र आधा जिउमा हिमालयकी छोरी पार्वतीले अङ्कमाल गरिनुभएका, सधैँ आनन्दमा डुब्ने तथा ज्योतिस्वरूप महादेवको म सधैँ भजन गर्दछु ॥३२-३४॥

सज्जनहरूद्वारा सधैँ हृदयमा चिन्तन र धारण गरिनुहुने, योगिनीहरूका स्वामी, हिमालयकी छोरीको मुखमा टुलुटुलु हेरेर हाँस्नुहुने, चन्द्रमाका कान्तिको पुञ्जसमान विशाल शरीरले सुहाउनुभएका र कारणवश प्रपञ्चतिर झुकेको चित्तवृत्ति लिनुहुने महादेवको म सधैँ भजन गर्दछु। चैतन्य तथा आनन्दस्वरूप, विकाररहित अन्धकाररूपी पापलाई नाश गरेर त्यसमा निमग्न प्राणीहरूको उद्धार गर्नुहुने, मूलाधार, स्वाधिष्ठान, मणिपूरक, अनाहत, विशुद्ध र आज्ञानामक छवटा चक्रमा प्रकाशित हुनुहुने, जीवरूप एवं शरीरको निर्माणका लागि दत्तचित्त महादेवलाई म सधैँ नमस्कार गर्दछु ॥३५-३६॥

संसारमा लिप्त न हुनुभएका, पापरहित, प्रथम ईश्वर, ईडा, पिङ्गला एवं सुषुम्णा नाडीको बीचमा विराजमान, सांसारिक प्रपञ्चको अङ्ग भएका स्वेदज, अण्डज, जरायुज र उद्भिज्ज, यी चारै रूपले शोभायमान तथा सज्जनहरूका स्वामी भगवान् शिवको हर्षले म बारम्बार भजन गर्दछु, भजन गर्दछु मूलाधार पद्ममा रहेर सज्जनहरूको मनले सधैँ चिन्तन गरिने, योगरूप भएका, मुक्तिका स्वामी र चन्द्र, सूर्य तथा अग्निस्वरूप तीन आँखा भएका, महेश, इन्द्र र सूर्यस्वरूप महादेवको म सधैँ भजन गर्दछु।हे अष्टमूर्ति ! जसको अंश भएर जन्मिएका इन्द्रले स्वर्गलोकलाई पालना गरेका छन् जसबाट उत्पन्न तेजले अन्धकारलाई नाश गरेको छ, जड, मूर्ख र अज्ञानीलाई पनि मोक्ष दिलाउने करुणासागर महादेवलाई म बारम्बार नमस्कार गर्दछु ॥३७-३९॥

---

१४. च मड्डुं भजेऽहम्, इति न.सं.पु.पाठः। १५. योगिनां शयम्, इति न.सं.पु.पाठः। १६. सुषुम्णामध्यवृत्तम्, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

एवं स्तुत्वा महादेवं परिक्रम्य मुहुर्मुहुः। वैशाखपूर्णिमायान्ते भक्त्यानर्च्चुश्च पञ्चभिः ॥४०॥

रुद्रानुशासनस्थोऽसौ नन्दी तत्पुरतोऽगमत्। वरदानाय तेभ्यो यद् व्याजहार वचो मुदा ॥४१॥

नन्द्युवाच

भक्तितो याच्यतां मां यत्स्वान्तेप्सितानि वः खलु। यूयं विकिल्विषाश्चाद्य सञ्जाता[१७] रुद्रदर्शनात् ॥४२॥

इह लोके वरस्थानं नृपाणां च सुदुर्लभम्। सुदुर्ल्लभां विभूतिं वा सुरलोकेऽपि वा परम् ॥४३॥

धीवरा ऊचुः

नैव याचामहे तां त्वामिह लोकेऽपि तां स्थितिम्। काङ्क्षामः स्वर्गलोकेषु पृथक् स्थानं ददस्व नः ॥४४॥

स्कन्द उवाच

इत्याकर्ण्य वचस्तेषां स्वीकारं कृतवान्सुरः। तानादध्युर्गणा रौद्रा विमाने सार्वकामिके ॥४५॥

निन्युर्व्योम्नश्च यानस्थान् प्रमथा देवसद्मसु। संस्थापिता गणै रौद्रैर्देवलोकेषु ते पृथक् ॥४६॥

मैवात्र तिष्ठ शक्र त्वं[१८] यत्रेप्सितं व्रजाऽऽशु तत्। नो चेन्निस्सारयामोऽद्य निहन्मः समराङ्गणे[१९] ॥४७॥

एवं तैस्ताड्यमानाश्च वागसिभिर्दिवौकसः। अमर्षैः पूरिताः सद्यो बभूवुरुद्यता युधि ॥४८॥

युयुधुस्त्रिदशैस्सार्धं धीवरा वरदर्पिणः। तत्स्थानानि सुनिर्ज्जित्य देवान् तस्थुवरेषु ते ॥४९॥

आत्मसात्कृतवन्तस्ते शक्रलोकपुरःसरान्। लोकान् बुभुजिरे भोगान् तेषु रुद्रप्रसादतः ॥५०॥

ततः सहस्रवर्षान्ते ययुः सम्भूयासन् ते विधिम्। इन्द्रादिलोकपालाश्च दिक्पालाश्च घटोद्भव[२०] ॥५१॥

---

कार्तिक स्वामीले भन्नुभयो – यसरी वैशाख पूर्णिमाको दिन तिनीहरूले महादेवको बारम्बार परिक्रमा गरी भक्तिपूर्वक पञ्चोपचार विधिले पूजा गरे। महादेवका आज्ञाले तिनीहरूलाई वर दिनका लागि नन्दी सामुन्नेमा जानुभयो र प्रसन्न हुँदै उहाँले भन्नुभयो। भक्तिपूर्वक गरेको रुद्रको दर्शनले तिमीहरू आज पापदेखि मुक्त भयौ। यस लोकमा अथवा स्वर्गलोकमा राजाहरूले पनि प्राप्त गर्न नसक्ने उत्कृष्ट स्थान वा ऐश्वर्य तिमीहरू जे चाहन्छौ, त्यो वर मसित माँग ॥४०-४३॥

मलाहाहरूले भने – हामी तपाईंसित यसको उत्तम स्थान एवं ऐश्वर्य माग्दैनौं। स्वर्गलोकमा पनि त्यस किसिमको ऐश्वर्य हामी चाहदैनौं। हामी स्वर्गलोकमा छुट्टै बस्ने ठाउँ चाहन्छौं, त्यो हामीलाई दिनुहोस् ॥४४॥

कार्तिक स्वामीले भन्नुभयो – तिनीहरूको वचन सुनेर तिनीहरूले भनेको कुरा नन्दीले स्वीकार गर्नुभयो। रुद्रका गणहरूले सबै कामका निमित्त उपयोग गर्न सकिने विमानमा तिनीहरूलाई आरोहण गराए। प्रमथ आदि गणले तिनीहरूलाई विमानमा राखेर आकाशमार्गबाट देवलोकमा लगे र अलग-अलग ठाउँमा स्थापित गरे ॥४५-४६॥

त्यसपछि माझीहरूले 'हे इन्द्र ! अबदेखि यहाँ नबस, जहाँ तिम्रो मन लाग्छ, त्यही ठाउँमा तुरुन्त जाऊ, हाम्रो भनाइलाई यदि मान्दैनौ भने आजै यहाँबाट निकालिदिन्छौं। यदि तिमी हामीसित लडाइँ गर्छौ भने युद्धमैदानमा तिमीलाई मारिदिन्छौं' भने। यसरी माझीहरूका वचनरूपी तरवारद्वारा चोट खाएका देवताहरू क्रुद्ध भएर लड्नका लागि तत्पर भए ॥४७-४८॥

महादेवको वरबाट उन्मत्त भएका माझीहरूले देवताहरूसँग लडेर तिनीहरूलाई जिती तिनीहरूका उच्च किसिमका पदहरूमा आफूहरू बसे। हे अगस्त्य मुनि ! भगवान् रुद्रका वरले गर्दा इन्द्र आदि लोकलाई उनीहरूले आफ्नो अधीनस्थ तुल्याई त्यहाँ बसेर सुखभोग गरे। हे अगस्त्य मुनि ! हजार वर्षको अन्त्यमा इन्द्रआदि सबै देवता देवलोकमा आइलागेको सङ्कटनिवारण गर्नका लागि सरसल्लाह गर्न दिक्पालहरूसँग भेटघाट गर्न गए ॥४९-५१॥

---

१७. भवेयु, इति न.सं.पु.पाठः। १८. शक्राच्च, इति न.सं.पु.पाठः।

१९. याम्यद्य युद्धे चेत्त्वां प्रहन्म्यहम्, इति न.सं.पु.पाठः।

२०. आसीत् सहस्रवर्षान्ते सम्भूयासन् सुरा ययुः। दिक्पालालोकिनः सर्वे शक्रादयो घटेद्भव ॥, इति न.सं.पु.पाठः।

आकर्ण्य वचनं तेषां ब्रह्मा तैः त्रिदशैः समम्। विष्णुलोकं ययौ सद्यो ह्यवोचद् व्यसनं हि तत् ॥५२॥
वचो निशम्य विष्णुश्च ब्रह्मादिभिः समं पुनः। रुद्रलोकं ययौ तद्धि चाऽवोचद् व्यसनं तदा ॥५३॥

देवा ऊचुः

रक्ष रक्ष विभो नो वः किङ्करान् स्थानचालतः। धीवरोपप्लवार्ताः स्मो नमः सर्वार्तिहारिणे ॥५४॥

रुद्र उवाच

अवश्यं भुज्यते देवाः कृतं कर्म शुभोदितम्। धीवरैस्तैः सुनिष्पापैः प्रतोषितस्तपोबलैः ॥५५॥
अतो दत्तो वरः तेभ्यो भक्तितोषेण चोन्नतः। कालश्च याचितो मत्तो भोक्तारो लक्षवत्सरम् ॥५६॥

स्कन्द उवाच

रुद्रगिरञ्च गीर्वाणाः श्रुत्वा लोकं स्वकं ययुः। बुभुजिरे सुखं तेषु लक्षाब्दैकसहस्रकम् ॥५७॥
भुवःस्वर्जनलोकास्ते महस्तपो हरेर्मम। अष्टौ लोकाश्च दिव्यानां सूर्येन्द्रोडुगणस्य च ॥५८॥
एकदा सम्मतो विष्णोर्न्नारदः पर्यटन्महीम्। धीवरेणार्च्चितो भक्त्या ब्रह्मपुत्रेति सादरम्[२०क] ॥५९॥

वङ्गुरुवाच

अहोभाग्यं ममैवाद्य यतो भवानिहागतः। प्रवृत्तिज्ञः प्रवृत्तिन्नो लोकेषु[२१] वद मे विभो ॥६०॥

नारद उवाच

वत्सेह लोकपो भूत्वा न जागर्षि कथं ध्रुवम्। सहस्रोत्तरलक्षाब्दं दत्ता रुद्रेण वः स्थितिः ॥६१॥
तदन्ते स्वर्गतो यूयं पतिष्यथ[२२] न संशयः। यथापूर्वं क्षितौ शश्वत् स्ववृत्तेः कारकाः पुनः ॥६२॥

---

त्यसपछि इन्द्र महाराज दिक्पाल र देवताहरूका साथ विष्णुलोक गए र त्यहाँ विष्णुलाई सारा वृत्तान्त बताए। विष्णु पनि ब्रह्मा आदि देवताहरूलाई साथै लिएर रुद्रलोकमा जानुभयो र रुद्रलाई भएको सारा वृत्तान्त बताउनुभयो ॥५२-५३॥

देवताहरूले भने – हे विभो ! सम्पूर्ण पीडालाई निवारण गर्ने हजुरलाई नमस्कार छ। माझीहरूको उपद्रोले गर्दा हामी अत्यन्त पीडित भएका छौँ, आफ्नो ठाउँ छोडेर हिँडेका हजुरका भक्त हामीहरूको रक्षा गर्नुहोस् ॥५४॥

भगवान् शिवजीले भन्नुभयो – हे देवता हो ! गरेका शुभकर्मको फल भोग्न अवश्य पाइन्छ, तपस्याले निष्पाप भएका ती माझीहरूले मलाई खुसी गराएका थिए। त्यसैले उनीहरूको भक्तिबाट प्रसन्न भएर मैले उनीहरूलाई एकलाख वर्षसम्म स्वर्गसुख भोग गर्न पाउने गरी उत्तम वर दिएको थिएँ ॥५५-५६॥

कार्तिक स्वामीले भन्नुभयो – रुद्रको कुरा सुनेर सबै देवताहरू आ-आफ्ना लोकमा फर्किए। भुवर्लोक, स्वर्लोक, जनलोक, महर्लोक, तपोलोक, विष्णुलोक आदि आठ लोकमा र सूर्यलोक, चन्द्रलोक तथा तारालोकमा एकलाख एक हजार वर्षसम्म माझीहरूले भोग गरे ॥५७-५८॥

कुनै समयमा विष्णुप्रिय नारदमुनि पृथ्वीमा हिँडिरहनुभएको थियो। ब्रह्माजीका छोरा हुन् भन्ने ठानेर वङ्गुनामक माझीले उहाँलाई नमस्कार गरी भक्तिपूर्वक उहाँको पूजा पनि गर्‍यो ॥५९॥

वङ्गुले भन्यो – हे विभो ! मेरो ठूलो भाग्य रहेछ। हजुर आज यहाँ पाल्नुभयो, हजुर भविष्यको कुरा जान्न सक्नुहुन्छ, हामीहरूको यस लोकमा वास कहिलेसम्म होला ? बताइदिनुहोस् ॥६०॥

नारदले भन्नुभयो – हे बाबु ! तिमी, यति ठूला लोकरक्षक भएर पनि किन सचेत छैनौ ? महादेवले तिमीहरूलाई एकलाख एक हजार वर्षसम्म यहाँ बस्नका लागि स्थान दिनुभएको छ। त्यसपछि तिमीहरू सबैको यहाँबाट पतन हुनेछ, यसमा शङ्का छैन। पृथ्वीमा गएर तिमीहरू पहिलेजस्तै निरन्तर आफ्नो काममा लाग्नेछौ ॥६१-६२॥

---

२०क. ब्रह्माङ्गजेति सन्नमन्, इति न.सं.पु.पाठः।
२१. लोकानाम्, इति न.सं.पु.पाठः।
२२. समतो यूयं भ्रशिष्यन्ति, इति न.सं.पु.पाठः।

वंगुरुवाच

तपांस्यत्र करिष्यामि आराधयन् विभुं शिवम्। भोक्ष्ये दिव्यसुखं भूयोभ्रातृभिस्तादृशैः पुनः[२२क] ॥६३॥

नारद उवाच

मैवं मर्त्ये हि वक्तव्यं मनसापि कदा बुध। अत्रोद्भूतस्तपोवृक्षः फलति न फलानि सः ॥६४॥

विना हिमालयं पुण्यं फली स्यान्न तपोद्रुमः[२३]। पूर्वं हिमालये चैतत् कृतस्य तपसः फलम्[२४] ॥६५॥

वङ्गुरुवाच

कियद्वर्षमिह स्थाने संस्थातव्यं मया विभो। भ्रातृभिश्च[२५] विशेषेण वद मे सर्ववित्पुनः ॥६६॥

नारद उवाच

एकाब्दं विद्यते शेषं स्वर्गभोग्यं च वः किल। पतिष्यथ ध्रुवं स्वर्गाद् भ्रातरस्त्वञ्च सर्वतः ॥६७॥

यावत्सौख्यं च तावद्धि दुःखमेव भविष्यति। सुखदुःखान्विता भूतिर्धीमद्भिस्त्यज्यते हि सा ॥६८॥

निर्वाणमेव सौख्यं स्यात्सर्वदुःखैर्विवर्जितम्। अत एवार्य्यधीमद्भिर्मोक्षः प्रार्थ्यो यतः शिवे ॥६९॥

वङ्गुरुवाच

अवश्यमेव काङ्क्षामो निर्वाणं नारद ध्रुवम्। उपदेशामृतैर्मां तान् प्रसिञ्चयाशु धर्मवित् ॥७०॥

भ्रातृणामग्रतः सत्या चैषा वार्ता च वर्ण्यताम्। अवश्यं तत्र यास्यामस्तपःस्थानं पुनस्त्विति ॥७१॥

नारद उवाच

गच्छाशु भ्रातृभिः सार्द्धं तपःसानौ हिमालये। लोमशादुपदिष्टं यत् धृत्वा[२६] तत्र तपस्यताम् ॥७२॥

---

वङ्गुले भन्यो – विश्वमा व्यापक रूपमा रहेका शिवजीको आराधना गर्दै फेरि तपस्या गर्छु, तपस्यामा संलग्न अरू भाइहरूका साथ फेरि पनि धेरै वर्षसम्म स्वर्गको भोग गर्नेछु ॥६३॥

नारदले भन्नुभयो – हे ज्ञानी ! यो कुरा मर्त्यलोकमा मात्र हुन्छ। यहाँ उम्रेको तपस्याको वृक्षमा फल लाग्दैन। यो कुरा मनले नचिताए पनि हुन्छ। हे बाबु ! पवित्र हिमालयमा बाहेक अन्यत्र उम्रेको तपोवृक्ष फल्दैन। पहिले हिमालयमा गरेको तपस्याको फल अहिलेसम्म भोग्दै आएका छौ ॥६४–६५॥

वङ्गुले भन्यो – हे विभो ! यस ठाउँमा म र भाइहरू कति वर्षसम्म बस्न पाउँछौं? हजुर सबै कुरा जान्नुहुन्छ, मलाई विशेष गरी बताइदिनुहोस् ॥६६॥

नारदजीले भन्नुभयो – स्वर्गमा भोग गर्ने समय अब एक वर्ष मात्र बाँकी छ। त्यसपछि तिमी र तिम्रा भाइहरूको स्वर्गबाट अवश्य पतन हुनेछ। जहाँसम्म सुख रहन्छ, त्यहाँसम्म दुःख पनि रहन्छ। त्यसैले सुख र दुःखले जेलिएको ऐश्वर्यलाई बुद्धिमान् मानिसहरूले छाडिदिन्छन्। सम्पूर्ण दुःखबाट मुक्त भएको मुक्ति नै वास्तविक सुख हो त्यसैले हे आर्य ! विद्वान्हरूले शिवजीसित मुक्तिको नै प्रार्थना गर्नुपर्दछ ॥६७–६९॥

वङ्गुले भन्यो – हे नारदजी ! हामी स्थिर निर्वाण अर्थात् मुक्ति अवश्य चाहन्छौं। भाइहरूका सामुमा गएर यो सत्य तिनीहरूलाई बताइदिनुहोस्। हे धर्मज्ञ ! उपदेशरूपी अमृतले मलाई र मेरा भाइहरूलाई अविलम्ब सेचन गर्नुहोस्। हामी फेरि उही तपस्थलमा अवश्य जानेछौं ॥७०–७१॥

नारदले भन्नुभयो – हिमालयको शिखरमा तपस्या गर्न भाइहरूलाई साथै लिएर तुरुन्त जाऊ। त्यहाँ गएर लोमश ऋषिको उपदेश ग्रहण गरी तदनुसार तपस्या गर ॥७२॥

---

२२क. भ्रातरस्तादृशाः पुनः, इति न.सं.पु.पाठः।

२३. हिमालये पुण्ये समुद्भूततपोद्रुमम्, इति न.सं.पु.पाठः।

२४. पूर्वं हिमालये वत्स एतत्कालतपःकृताम्, इति न.सं.पु.पाठः।

२५. भातृणाञ्च, इति न.सं.पु.पाठः।

२६. लोमशादुपदिष्टं यत् गृह्य, इति न.सं.पु.पाठः।

स्कन्द उवाच।

इत्यादिश्य ययौ दान्तो नारदो धीवरं मुने। सर्वलोकं समागम्य वार्त्तान्तेभ्य उवाच ताम् ॥७३॥

नारदस्य वचः श्रुत्वा मन्त्रयन्तः परस्परम्[२७]। सर्वलोकांश्च सन्त्यज्य प्रययुर्हिमवद्गिरिम् ॥७४॥

तपःस्थं लोमशं दान्तं प्रेक्ष्य तदाश्रमं ययुः। प्रणम्य विधिवद् भक्त्या प्रोचुः समन्ततो हि ते ॥७५॥

धीवरा ऊचुः

धर्म्मैर्विवर्ज्जिता प्राप्ताः[२८] प्रभ्रष्टाः स्वर्गतो वयम्। बहु तेषु सुखं भुक्त्वा दैवेन प्रेरिता इह ॥७६॥

क्व यास्यामः क्व तिष्ठामो निर्वाणलिप्सवो वयम्। तदुपदिश्यतां नो वै भवान्सर्वविदात्मवित् ॥७७॥

स्कन्द उवाच

इत्याकर्ण्य वचस्तेषां लोमशो हर्षितो[२९] मुने। स्वागतं[३०] योगरूढांस्तानवोचद्वचनं तदा ॥७८॥

लोमश उवाच

साधु साधु नरश्रेष्ठा ईदृग्धीर्विधृता यतः। क्षुद्रस्वप्नसुखं स्वर्गं सुखदुःखपराङ्मुखाः[३१] ॥७९॥

हरशीर्षाच्चिर्चतायास्तु सङ्गमे[३२]ऽलकनन्दया। धर्मकूटे त्रिधा स्नात्वा रुद्राश्रमं प्रगच्छत ॥८०॥

पञ्चाक्षरं हि ध्यायन्त आराधयत[३३] शङ्करम्। नम आद्यं[३४] चतुर्थ्यन्तं तद्रूपं मोक्षदं शिवम् ॥८१॥

धीवरा ऊचुः

प्रष्टुमिच्छामहे किञ्चिद्भवन्तं भवता प्रभो[३५]। कियन्तो वत्सरा नीता तपःस्थेनात्र[३६] वर्णिना ॥८२॥

स्कन्द उवाच

श्रुत्वा तद्वचनं दान्तो विहस्यार्यः स्मिताननः। व्याजहार वचस्तेभ्यश्चिरञ्जीवी महामुनिः[३७] ॥८३॥

---

कार्तिक स्वामीले भन्नुभयो – यस्तो उपदेश दिएर नारदले त्यस माफी भएको ठाउँबाट अरू भाइहरू भएको ठाउँमा आएर उनीहरूलाई सबै कुरा बताउनुभयो। नारदको भनाइ सुनेपछि सबै भाइ जम्मा भएर तुरुन्तै सल्लाह गरे। अनि सबै लोकलाई छाडेर उनीहरू हिमालय पर्वतमा गए। तपस्यामा संलग्न जितेन्द्रिय लोमश ऋषिलाई देखेर उनको आश्रममा गई चारैतर्फबाट विधिपूर्वक नमस्कार गर्दै भन्न लागे ॥७३-७५॥

धीवरहरूले भने – हाम्रो धर्म सकियो, स्वर्गबाट हामी खस्यौं, ती लोकहरूमा धेरै समय सुखभोग गरेपछि दैवको प्रेरणाले हामी यहाँ आएका छौं। कहाँ जाऔं ? कहाँ बसौं ? मोक्ष कसरी प्राप्त हुन्छ ? हजुर सर्वज्ञ र आत्मज्ञानी हुनुहुन्छ, हामीलाई ती सबै कुराको उपदेश गर्नुहोस् ॥७७॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! यो कुरा सुनेर प्रसन्न भएका लोमश ऋषिले त्यसबेला योगारुढ ती मलाहाहरूलाई स्वागत गर्दै भन्नुभयो ॥७८॥

लोमश ऋषिले भन्नुभयो – हे नरश्रेष्ठ हो ! तिमीहरू धन्य छौ, धन्य छौ, किनभने सम्पूर्ण सुख र दुःखबाट पराङ्मुख भएर स्वर्गको सुखलाई सपनाको क्षुद्र सुखबराबर ठान्ने तिमीहरूको बुद्धि पलाएछ। शिवजीको शिरबाट झरेकी गङ्गा र अलकनन्दाका सङ्गममा तीनपटक नुहाएर धर्मकूटमा रहेको रुद्राश्रममा जाओ। सुरुमा नमः पद भएर अन्त्यमा चतुर्थी विभक्ति भएको मोक्षदायी शिवको पञ्चाक्षरी (नमः शिवाय) मन्त्रलाई हृदयले जप्दै भगवान् शङ्करको आराधना गर ॥७९-८१॥

मलाहाहरूले भने – हे प्रभो ! हामी हजुरसँग केही सोध्न चाहन्छौं। हजुरले यस ठाउँमा, यस भेषमा तपस्या गर्दै कति वर्ष बिताउनुभयो ? ॥८२॥

कार्तिक स्वामीले भन्नुभयो – तिनीहरूको कुरा सुनेर जितेन्द्रिय चिरञ्जीवी लोमश ऋषिले हाँसेर तिनीहरूलाई भन्न लाग्नुभयो ॥८३॥

---

२७. सम्मील्य मन्त्रयंस्तदा, इति न.सं.पु.पाठः। २८. ज्ञेयाः, इति न.सं.पु.पाठः। २९. हर्षवान्, इति न.सं.पु.पाठः।
३०. स्वागताम्, इति न.सं.पु.पाठः। ३१. स्वर्गन्ते सुदुःखपराङ्मुखा, इति न.सं.पु.पाठः।
३२. हरशीर्षाचिता नद्या सङ्गमे, इति न.सं.पु.पाठः। ३३. हृदा ध्यायमाराधयत, इति न.सं.पु.पाठः।
३४. नमश्चाद्यम्, इति न.सं.पु.पाठः। ३५. भवतः प्रभौ, इति न.सं.पु.पाठः। ३६. कियन्तो वत्सरं नीतं तपस्थस्यात्र, इति न.सं.पु.पाठः।
३७. चिरञ्जीवनात्मकः, इति न.सं.पु.पाठः।

लोमश उवाच

अचिरञ्जीविनो मे यत्पश्यन्तूरस्यलोमशम्। मुद्रानुमितमाद्यन्तल्लोमभिर्वर्जितं ध्रुवम् ॥८४॥

मन्वन्तरात्तदेकैकं लोमेदं भ्रश्यति ध्रुवम्। मन्वन्तराणि यातानि ज्ञेयानीत्थं हि[३८] धीवराः ॥८५॥

स्कन्द उवाच

निशम्य वचनं तस्य धीवरा जातविस्मयाः। स्वात्मानं खलु धिक्कृत्य नत्वा तमगमन् हरम्[३९] ॥८६॥

शुक्रशुक्लदशम्यान्ते सस्नुर्देवप्रयागके। सङ्क्रमे पूर्णिमायाञ्च त्रिवारं विधिवन्मुदा ॥८७॥

रुद्राश्रमं समारुह्य तप्तवन्तश्चिरं गिरौ। तन्मनस्का अनेकाब्दं सम्पूज्याहर्निशं मुहुः ॥८८॥

शरीराणि विहायाशु[४०] ज्योतीरूपञ्च शङ्करम्। तदा ते विविशुर्धीरा हिमाद्रितपसः फलम् ॥८९॥

शृणोति धीरो हिमभृन्महत्त्वं भक्तिप्रयुक्तो वरचित्तवृत्तिः।
देवप्रयागे सलिलाप्लवे यत् फलं लभेत त्रिदिवं यशश्च[४१] ॥९०॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे हिमालयमाहात्म्ये नवमोऽध्यायः ॥९॥

---

लोमश ऋषिले भन्नुभयो – अल्पायु भएका तिमीहरू पहिले रौँ नै रौँले भरिएको मेरो छातीको एक भाग हेर। त्यस्तै रौँ नभएको अर्को भाग हेर। यसैबाट मेरो तपस्याको अवधि अनुमान गर्न सकिन्छ। हे धीवर हो ! मन्वन्तरका हिसाबले एक-एक गरी रौँ खस्दै जान्छन्। हे धीवर हो ! यसै प्रमाणअनुसार मेरा खसेका रौँबराबरका मन्वन्तरहरू बितिसके ॥८५॥

कार्तिक स्वामीले भन्नुभयो – लोमशको कुरा सुनेर तिनीहरू छक्क परे। अनि आफूलाई धिक्कार्दै ऋषिलाई ढोगेर उत्तमतीर्थ रुद्रप्रयागमा गए। तिनीहरूले देवप्रयागमा आषाढ शुक्ल दशमी, सङ्क्रान्ति र पूर्णिमाका दिन तीन-तीन पटक विधिपूर्वक स्नान गरे। हिमालयको रुद्राश्रममा आरोहण गरेर उनीहरूले एक वर्षसम्म रातदिन शिवजीको पूजा गर्दै धेरै कालसम्म तपस्या गरे। तपस्याको अन्त्यमा शरीर त्याग गरी तिनीहरू तुरुन्त ज्योतिरूप भगवान् शङ्करमा लीन भए। यसरी तिनीहरूले हिमालयमा गरेको तपस्याको फल पाए ॥८६-८९॥

जसले भक्तिपूर्वक चित्त लगाएर हिमालयको महिमा श्रवण गर्नेछ त्यसले देवप्रयागको जलमा नुहाएको फलसमान पवित्र कीर्ति र स्वर्ग प्राप्त गर्नेछ ॥९०॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गत हिमवत्खण्डमा हिमालयको अलौकिक माहात्म्यवर्णन नामक नवौं अध्याय पूर्ण भयो।

---

३८. एतत्प्रमाणतो याता मन्वन्तराणि, इति न.सं.पु.पाठः।

३९. तन्नमन्नगमद्धरम्, इति न.सं.पु.पाठः।

४०. सन्त्यज्य विग्रहाण्याशु, इति न.सं.पु.पाठः।

४१. यल्लभेत्फलं पूतयशांसि नाकम्, इति न.सं.पु.पाठः।

# दशमोऽध्यायः

## गृहस्थधर्मवर्णनम्

अगस्त्य उवाच

भूयोऽहं श्रोतुमिच्छामि त्वत्तो ब्रह्मविदाम्बर। देवानां चासुराणाञ्च तपोऽन्येषां च यत् कृतम् ॥१॥

देव ! केन प्रकारेण तपश्चकार कः कदा। विधिना केन कः कस्मिन् स्थाने ध्येयो हिमालये ॥२॥

स्कन्द उवाच

शृणु मुने हि वक्ष्यामि यत्पृष्टं भवता च माम्। ब्रह्मकर्म तपो ज्ञानमादौ समाहितं मनः[1] ॥३॥

ब्राह्मे मुहुर्ते चोत्थाय संस्मरेत्पूर्वमीश्वरम्। ततो धरां नमस्कृत्य श्वासानुक्रमतो न्यसेत् ॥४॥

समुद्रवलये देवि पर्वतस्तनमण्डिते[2]। विष्णुपत्नि नमस्तुभ्यं पादस्पर्शं क्षमस्व मे ॥५॥

इति स्तुत्वा पदं न्यस्य बहिर्व्रजेद्विचक्षणः। नैर्ॠत्यां दिशि संव्रज्य मलमोचनमाचरेत् ॥६॥

मलमूत्रसमुत्सर्गं दिवा कुर्यादुदङ्मुखः। दक्षिणाभिमुखो रात्रौ सन्ध्ययोस्तु यथा दिवा ॥७॥

यज्ञसूत्रं श्रवे कृत्वा मौनी भूत्वा विचक्षणः। एवं कृत्वा च शौचार्थे जलाशयं समाव्रजेत् ॥८॥

उद्धृतोदकमादाय मृत्तिकां चैव वाग्यतः। उदङ्मुखो दिवा कुर्याद्रात्रौ चेद्दक्षिणामुखः ॥९॥

एका च लिङ्गे च गुदे च तिस्रः सव्ये च हस्ते च तथा दशापि।
कर्त्तव्यमेवं ह्युभयोस्तु सप्त मृच्छुद्धिरार्येण शुचौ बुधेन ॥१०॥

शौचं विप्र विधायैवं तिस्रः ग्तिस्रश्च पादयोः। शुद्धमुदकमादाय ह्याचमेच्च पुनःपुनः ॥११॥

---

अध्याय- १०

गृहस्थधर्मको वर्णन

अगस्त्य मुनिले भन्नुभयो – हे ब्रह्मज्ञ ! देवता, असुर र अरूहरूले जुन तपस्या गरे त्यो कुन तरिकाबाट भयो ? कहिले कसले हिमालयको कुन ठाउँमा तपस्या गरे ? ध्यान गरिने ध्येय देवता को हुन् ? हजुरबाट फेरि म सुन्न चाहन्छु ॥१–२॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! तपाईंले मलाई जुन प्रश्न सोध्नुभयो, मनलाई एकचित्त तुल्याएर गरिने त्यो ज्ञान म तपाईंलाई पहिले बताउँछु, सुन्नुहोस्– ब्राह्ममुहूर्तमा उठेर पहिले ईश्वरको स्मरण गर्नुपर्छ। त्यसपछि 'सातै समुद्रलाई आफ्नो परिधान वस्त्रका रूपमा प्रयोग गर्नुहुने हे समुद्रवसना देवी ! समग्र पर्वतहरूलाई कुच वा स्तनको रूपमा धारण गर्नुहुने हे विष्णुपत्नी पृथ्वी ! हजुरलाई नमस्कार छ। मैले हजुरलाई गोडाले स्पर्श गरें, क्षमा गर्नुहोस्' भन्दै पृथ्वीको स्तुति गरी नाकका दाहिने प्वालबाट सास खुलिरहेको भए दाहिने र देब्रेतिरबाट सास खुलेको भए देब्रे पाउका क्रमले पृथ्वीमा पहिलो पाइलो राख्नुपर्छ ॥४–५॥

यसरी स्तुति गरेर माथि भनिएको क्रम अनुसार पाइलो सार्दै बुद्धिमान् पुरुषले नैर्ॠत्य दिशामा गई मलमूत्र त्याग गर्नुपर्छ। मलमूत्र त्याग गर्दा जनै कानमा बेरेर मौन भई दिउसो र साँझमा उत्तर फर्किनुपर्छ। रातमा भए दक्षिण फर्कनुपर्छ। त्यसपछि शौचका लागि जलाशयमा गएर नबोलीकन पानी निकाली दिउसो र साँझमा उत्तर फर्किएर रातमा भए दक्षिण फर्किएर जननेन्द्रियमा एक पटक, गुदद्वारमा तीन पटक, देब्रे हातमा दश पटक, त्यसपछि दुबै हातमा दश पटक, फेरि दुबै हातमा सात पटक माटो लगाएर सफा गर्नुपर्छ। यसैगरी दुबै गोडामा तीन–तीन पटक माटो लगाई पानीले धोई सफा गर्नुपर्छ र बारम्बार आचमन गर्नुपर्छ ॥७–११॥

---

१. मनः समाहितः, इति न.सं.पु.पाठः। २. मण्डले, इति न.सं.पु.पाठः।

ततः सूर्यं निरीक्षेद्वै गां वाऽगस्त्य द्विजं तथा। तेषामालोकनात् शुद्धिमाप्नुयाद् हि[3] विचक्षणः ॥१२॥
मुखं प्रक्षाल्य पाणी द्वौ प्रकुर्याद्दन्तधावनम्। शुद्धकाष्ठं समादाय क्षीरिकण्टकसंयुतम् ॥१३॥
सर्वकण्टकिनां[4] पुण्यं प्रमाणं द्वादशाङ्गुलम्। परिजप्य च मन्त्रेण प्राङ्मुखः स उदङ्मुखः ॥१४॥
आयुर्बलं यशो वर्च्चः प्रजाः पशुवसूनि च। ब्रह्म प्रज्ञां च मेधां च त्वन्नो देहि वनस्पते ॥१५॥
मुखं प्रक्षाल्य हस्तौ च तथा पादौ समाहितः। मौनी भूत्वा जनः कुर्यादाचमनं पुनः पुनः ॥१६॥
ब्रह्मतीर्थेन हस्तेन मनुं स्मरन् धिया सुधीः। ऋजुकायः समासीनः प्राङ्मुखो वाऽप्युदङ्मुखः ॥१७॥
अङ्गुष्ठानामिकाभ्याञ्च श्रोत्रबन्धं ततः स्मृतम्। मुखे च नासयोः घ्राणे चक्षुषोः कर्णयोस्तथा ॥१८॥
बाह्वोरूर्व्वोस्तथाऽगस्त्य सर्वाङ्गानि ततः स्पृशेत् ॥१९॥
ॐ वाङ्मे आस्येऽस्तु ॐ नासयोर्घ्राणे मे प्राणोऽस्तु। ॐ अक्ष्णोर्म्मे चक्षुरस्तु ॐ कर्णयोर्म्मेश्रोत्रमस्तु ॥२०॥
ॐ बाह्वोर्मे बलमस्तु ॐ ऊर्वोर्म्मे ओजोऽस्तु। ॐ अरिष्टानि मेऽङ्गानि सन्तु ॐ तनुस्तन्वा मे सहोऽस्तु ॥२१॥
एतन्मनुं स्मरन् विप्रः सर्वाङ्गानि स्पृशेत्सुधीः। ततस्तीर्थं समागत्य स्नानं च विधिवत्पुनः ॥२२॥
प्रक्षाल्य हस्तौ पादौ च जिह्वामाचमनं सह। प्राणायामं ततः कृत्वा बध्नीयान्मनुना शिखाम्[5] ॥२३॥
ततस्तीर्थं समावाह्य मनुं स्मरन् च चेतसा। अद्याद्यस्मिन्नहं तीर्थे प्रीत्यर्थं वा हृदीप्सितम् ॥२४॥
स्नानमहं करिष्ये वा कामेनैवं यथा पुनः। गङ्गाभावेन तीर्थज्ञः प्रोन्मज्जेत्कुशहस्तकः ॥२५॥
न दोषा पूतसलिला हरमूर्तिर्नमोऽस्तु ते। आदौ सूर्य्याय देवाय ह्यपोऽजलिं[6] विचक्षणः ॥२६॥
दद्यान्मन्त्रं स्मरन्धीरो मृत्तिकास्नानमाचरेत्।

---

हे बुद्धिमान् अगस्त्य ! त्यसपछि सूर्य, गाई अथवा ब्राह्मणको दर्शन गर्नुपर्छ। तिनीहरूलाई हेर्नाले मात्र पनि शुद्धि प्राप्त हुन्छ। सूर्य आदिको दर्शन गरेपछि हात, मुख धोएर दूध आउने तथा काँढा भएको शुद्ध काठ (दतिवन) लिएर दाँत माझ्नुपर्छ। काँडा भएको रुखको बाह्र अङ्गुलको दतिवन पुण्यदायक मानिन्छ। त्यस्तो दतिवन लिएर हे वनस्पति ! तिमीले मलाई आयु, बल, कीर्ति, तेज, सन्तान, पशु, सम्पत्ति, ब्रह्मत्व, प्रज्ञा र प्रतिभा देऊ भन्दै पूर्व अथवा उत्तर फर्किएर दाँत माझ्नुपर्छ ॥१२-१५॥

हे अगस्त्य मुनि ! त्यसपछि मुख, हात र गोडा धोएर नबोलीकन एक चित्त भएर बारम्बार कुल्ला गर्नुपर्छ। ढाड सोझ्याएर पूर्व वा उत्तर फर्केर बसी मनले मन्त्र सम्झँदै हातको ब्रह्मतीर्थले आचमन गर्नुपर्छ। हे अगस्त्य ! दाहिने हातको बुढी औँला र साहिली औँला परस्पर जोडेर ॐ वाङ्मे आस्येऽस्तु यो मन्त्र पढेर मुखमा, ॐ नासयोर्घ्राणे मे प्राणोऽस्तु यो मन्त्र पढेर नाकमा, ॐ अक्ष्णोर्मे चक्षुरस्तु यो मन्त्रले आँखामा, ॐ कर्णयोर्मे श्रोत्रमस्तु यो मन्त्र पढेर कानमा, ॐ उर्वोर्मे ओजोऽस्तु यो मन्त्र पढेर तिघ्रामा, ॐ अरिष्टानि मे अङ्गानि सन्तु, ॐ तनुस्तन्वा मे सहोऽस्तु यस मन्त्रले शरीरका सबै अङ्गमा छुनुपर्छ र तीर्थमा गई विधिपूर्वक स्नान गर्नुपर्छ ॥१६-२२॥

हात, गोडा, जिब्रो सफा गरी आचमन गरेर प्राणायाम गरी मन्त्रको उच्चारण गर्दै शिखाबन्धन गर्नुपर्छ। त्यसपछि मनमनै मन्त्र जप्दै तीर्थहरूको आवाहन गरेर म आज परमेश्वरको प्रीतिका लागि अथवा आफ्नो मनले चिताएको फल प्राप्तिका लागि स्नान गर्दछु भन्दै सङ्कल्प गरेर कुश हातमा लिई तपाईं पवित्र जल भएकी नदी हुनुहुन्छ। तपाईंमा कुनै दोष छैन। यी शिवकी मूर्ति हुनुहुन्छ भनी प्रार्थना गर्दै गङ्गाजीलाई सम्झँदै स्नान गर्नुपर्छ र पहिले सूर्यलाई अर्घ्य दिनुपर्छ। त्यसपछि मन्त्रोच्चारण गर्दै माटो दलेर भक्तिपूर्वक स्नान गर्नुपर्दछ ॥२३-२६½॥

---

३. आलोकनाद्धि संशुद्धिमाप्नुयात्तान्, इति न.सं.पु.पाठः।
४. सर्वं कण्टकिणम्, इति न.सं.पु.पाठः।
५. शिखां मन्त्रेण बन्धयेत्, इति न.सं.पु.पाठः।
६. अपाञ्जलिं विचक्षणः, इति न.सं.पु.पाठः।

मृत्तिके हर मे पापं यन्मया दुःकृतं कृतम् ॥२७॥
त्वया हतेन पापेन सर्व्वपापैः प्रमुच्यते। इति पठन् सकृद्धीरः कुर्यात् सर्वाङ्गलेपनम् ॥२८॥
प्रणवेन ततो मन्त्री चावर्त्तयेत्त्रयं जले ॥२९॥
ततः सुविमले तीर्थे सर्वपापहरे शुभे। मनोनैर्मल्यभावेन स्मरन् मन्त्रं धिया सुधीः ॥३०॥
सर्वाङ्गघर्षणं कृत्वा प्रोन्मज्य च पुनः पुनः। निमज्जनत्रयं कुयद्दिवस्नानं परं मतम् ॥३१॥
आत्मानं मार्जयेद् धीरो द्रुपदादि ऋचं पठन्। कुशोदकं समादाय प्राङ्मुखं च मुहुर्मुहुः ॥३२॥
आपोहिष्ठेति जप्तेन करसंपुटयोजितम्। मूर्ध्नि कुर्य्याज्जलं भूयस्त्रिःसप्त पञ्चधा तथा ॥३३॥
प्राणायामत्रयं कृत्वा गायत्रीं प्रजपेद्दश। कुम्भाकारेण पाण्योश्च मूर्ध्नि त्रिःप्रक्षिपेत्पुनः ॥३४॥
एवं स्तानाविधिं कृत्वा तूत्तीर्य परिधाय वै। वाससी चोत्तरीयं वै ततस्तर्पणमाचरेत् ॥३५॥
अम्भःस्थो वा स्थलस्थो वा तर्पयेत् पितृदेवताः। तर्पयेत्तु यथाकाममप्सु सर्वं प्रतिष्ठितम् ॥३६॥
आपो देवगणाः सर्वे आपः पितृगणाः स्मृताः। तस्माज्जले जलं देयं पितृभ्यो दत्तमक्षयम् ॥३७॥
त्रिदशानां पितृणाञ्च जले दद्याज्जलाञ्जलिम्। असंस्कृतप्रमीतानां स्थले दद्याज्जलाञ्जलिम् ॥३८॥
तर्पणं तु शुचिः कुर्यात्प्रत्यहं स्नातको द्विजः। देवेभ्यश्च ऋषिभ्यश्च पितृभ्यश्च यथाक्रमम् ॥३९॥
देवाश्च पितरश्चैव वाञ्छन्ति सलिलं शुभम्। अदत्ते तु निराशास्ते प्रतियान्ति यथागतिम् ॥४०॥
तस्मात्सर्वप्रयत्नेन तर्पयेत्पितृदेवताः। तर्पणात् सिद्धिमाप्नोति प्रत्यवायो ह्यतर्पणात्[७] ॥४१॥

---

हे मृत्तिके ! मैले जुन नराम्रो कर्म गरैं, त्यसको पापलाई हरण गर्नुहोस्। तपाईंले पाप नाश गर्दा सबै पापबाट मुक्त हुन सकिन्छ भन्दै शरीरका सबै अङ्गमा माटो लगाउनुपर्दछ। त्यसपछि पहिले तीन पटक प्रणवाक्षरको अर्थात् ॐकारको आवृत्ति गर्दै निर्मल, सम्पूर्ण पापलाई नाश गर्ने कल्याणदायक तीर्थमा चित्त सफा तुल्याएर मनमनै मन्त्र जप्दै सम्पूर्ण शरीरलाई मुसारेर बारम्बार पानीमा डुबुल्की मार्नुपर्छ। तीन पटक डुबुल्की मारेर गरिएको स्नानलाई उत्तम देवस्नान भनिएको छ। त्यसपछि पूर्व फर्किएर कुशसहित पानी लिँदै द्रुपदादि ऋचा पढेर आफूलाई मार्जन गर्नुपर्छ ॥२७–३२॥

अँजुलीमा जल लिएर आपोहिष्ठा इत्यादि मन्त्र पढ्दै पाँच अथवा सात पटक आफ्नो शिरमा जल खन्याउनुपर्छ। त्यसपछि तीन पटक प्राणायाम गरेर दश पटक गायत्री जप्नुपर्छ अनि दुइ हातको कुम्भमुद्राले शिरमा तीन पटक जल खन्याउनुपर्छ। यसरी स्नान गर्ने काम समाप्त गरी पानीबाट बाहिर आएर लुगा फेरेर तर्पण गर्नुपर्छ ॥३३–३५॥

सम्पूर्ण तत्त्वहरू जलमा नै रहेका हुनाले आफ्नो इच्छाअनुसार जलमा बसेर अथवा जमिनमा बसेर देवता तथा पितृहरूको तर्पण गर्नुपर्छ।। सबै देवता, सबै पितृहरू जलमा नै रहन्छन्। त्यसैले जलमा पितृहरूलाई गरेको तर्पण अक्षय हुन्छ। तसर्थ देवता र पितृहरूलाई पानीमा तर्पण गर्नुपर्छ। संस्कार नभईकन मरेका व्यक्तिहरूलाई भने भुईंमा जलाञ्जलि दिनुपर्छ। स्नातक अर्थात् समावर्तन संस्कार भइसकेका द्विजहरूले पवित्र भएर सधैँ क्रमशः देवता, ऋषि र पितृको तर्पण गर्नुपर्छ ॥३६–३९॥

देवता, ऋषि र पितृहरू सधैँ जलको चाहना राख्दछन्। तर्पण नदिएमा उनीहरू निराश भएर जसरी आए, त्यसरी नै फर्किएर जान्छन्। त्यसैले जसरी भए पनि प्रयास गरेर देवता र पितृहरूको तर्पण गर्नुपर्छ। तर्पण गर्नाले सिद्धि र तर्पण नगर्नाले प्रत्यवाय (दोष) लाग्छ ॥४०–४१॥

---

७. प्रत्यवायमतर्पणात्, इति न.सं.पु.पाठः।

तत्तर्पणविधिं कृत्वा परिधानयुतो यतिः[८] । आचम्य च त्रयं मौनी सन्ध्यां कुर्याद्विचक्षणः ॥४२॥
ब्रह्मतीर्थेन हस्तस्य मनुं स्मरन् धिया सुधीः । ऋजुकायः समासीनः प्राङ्मुखो वाप्युदङ्मुखः ॥४३॥
शुचौ देशे समागत्य स्थानशुद्धिं विचारयेत् । गृहे त्वेकगुणं कृत्यं नद्यां दशगुणं स्मृतम् ॥४४॥
गवां गोष्ठे शतगुणमग्न्यागारे शताधिकम् । सिद्धक्षेत्रेषु तीर्थेषु देवतानाञ्च संनिधौ ॥४५॥
सहस्रशतकोटीनामनन्तं शिवसन्निधौ । गिरिकूटे महातुङ्गे किंशुके च तथाविधम् ॥४६॥
कोटिकोटिगुणं पुण्यं तत्र कृत्वा प्रलभ्यते । सानुषु हिमशैलस्य तपसामर्बुदं गुणम् ॥४७॥
तुषारदर्शने कूटे कृतं दशगुणं फलम् । हिमकण्ठाङ्किते कूटे खर्वगुणं फलं लभेत् ॥४८॥
उपत्यकासु शीताद्रेः निखर्वं मध्यतः पुनः । हिमसंहतिकूटेषु महापद्मगुणं क्रमात् ॥४९॥
आसनं च ततो धीमान् प्रकल्पयेद् विधानतः । सर्वसिध्यै व्याघ्रचर्म ज्ञानसिध्यै मृगाजिनम् ॥५०॥
वास्त्रं रोगहरं विद्धि वेत्रजं श्रीप्रवर्द्धनम् । कौशेयं पौष्टिकं ज्ञेयं काम्बलं दुःखमोचकम् ॥५१॥
यथोक्ते चासने धीमान् ऋजुकायः प्रवेशयेत् । स्वस्तिके चैव पद्माख्यं संविधाय विचक्षणः ॥५२॥
जानूर्वोरन्तरे सम्यक् कृत्वा पादतले शुभे । ऋजुकायः समासीनः स्वस्तिकं तु महासनम् ॥५३॥
विधायेत्थं महाप्राज्ञः प्राणायामत्रयं ततः । ऋषीनादौ च संस्मृत्य मौनी निमीलितेक्षणः ॥५४॥
विधाय पूरकं कुम्भं रेचकं च ततः परं । त्रिषु स्थानेषु ध्येयो वै श्यामो रक्तस्था सितः[८क] ॥५५॥
नाभौ हृदि ललाटे च पूरके कुम्भके तथा । रेचके च महाप्राज्ञः ज्ञेयः क्रमात् क्रमो द्विज ॥५६॥

---

संयमी विद्वान्ले तर्पण गरेपछि कपडा फेरेर पवित्र ठाउँमा आई पूर्व अथवा उत्तरतर्फ फर्केर पीठ्यूँ सोझ्याई बसेर विष्णुलाई सम्झँदै दाहिने हातको ब्रह्मतीर्थले तीन पटक आचमन गरेर कसैसँग नबोली सन्ध्या गर्नुपर्छ। सन्ध्या गर्दा स्थानशुद्धिमा खूब विचार पुऱ्याउनुपर्छ ॥४२-४३½॥

घरमा सन्ध्या गर्नाले एकगुणा, नदीमा गर्नाले दशगुणा, गाईको गोठमा गर्नाले सयगुणा, अग्निशालामा सन्ध्या गर्नाले सयभन्दा बढीगुणा, सिद्धक्षेत्र, तीर्थ तथा देवताको नजिकमा गर्नाले सय हजार करोडगुणा र शिवजीका नजिकमा बसेर गर्नाले असङ्ख्यगुणा फल प्राप्त हुन्छ। त्यस्तै अग्ला पहाडका टाकुरामा र पलासको रुखको नजिकै बसेर सन्ध्या गर्नाले करोडौं करोडगुणा बढी पुण्यफल प्राप्त हुन्छ ॥४४-४६॥

हिमालयको टापूमा सन्ध्या गर्नाले दशलाख गुणा बढी पुण्यफल प्राप्त हुन्छ । हिउँ देखिने टापूमा बसेर सन्ध्या गर्नाले दश गुणा बढी पुण्यफल पाइन्छ। हिउँले ढाकिएको शिखरमा बसेर तपस्या गर्नाले खरबौं गुणा बढी पुण्यफल प्राप्त हुन्छ। हिमालयको उपत्यकाको माझमा बसेर सन्ध्या गर्नाले निखर्ब गुणा पुण्यफल प्राप्त हुन्छ। त्यस्तै हिमराशिको शिखरमा बसेर सन्ध्या गर्दा महापद्मगुणा बढी पुण्यफल प्राप्त हुन्छ ॥४७-४९॥

त्यसपछि बुद्धिमान् साधकले सन्ध्याका निमित्त शास्त्रमा बताइएअनुसारका आसनको व्यवस्था गर्नुपर्दछ। सबै प्रकारका सिद्धिका लागि बाघको छालाको आसन र ज्ञानसिद्धिका लागि मृगका छालाको आसन बनाउनुपर्छ । कपासको आसनले रोगलाई नाश गर्छ, वेतको आसनले लक्ष्मीलाई बढाउँछ, रेशमको कपडाको आसनले पुष्टि दिन्छ र ऊनीको कपडाको आसनले दुःखबाट मुक्त गराउँछ ॥५०-५१॥

यसप्रकार निर्देश गरिएका आसनमा बसेर घुँडा र तिघ्राका बीचमा दुबै पैताला राखी शरीर सोझो गराई स्वस्तिकासन वा पद्मासन बाँधेर आँखा चिम्ली पहिले ऋषिलाई सम्झी नबोली पूरक, कुम्भक तथा रेचक नामका तीन प्राणायाम गर्नुपर्छ। पूरक गर्दा नाभिमा श्याम वर्ण भएका, कुम्भक गर्दा हृदयमा रक्त वर्ण भएका र रेचक गर्दा निधारमा श्वेतवर्ण भएका ईश्वरको ध्यान गर्नुपर्छ ॥५२-५६॥

---

८. परिधानधृतो यतिः, इति न.सं.पु.पाठः ।
८क. ... ध्येयं वै श्यामं रक्तं तथा सितम्, इति न.सं.पु.पाठः ।

अङ्गेषु स्पर्शनं कुर्यात् षट्सु स्थानेषु मन्त्रवित्। हल्ललाटशिरःस्कन्धचक्षुष्पाणिषु सन्न्यसेत्॥५७॥
अर्घ्यं दद्यात् सुधीः पूर्वं सूर्याय पुष्पसंयुतम्। आपोहिष्ठेति मन्त्रेण मनुं स्मरँस्तु चेतसा॥५८॥
ततो मालां समादाय यथोक्तमणिसम्भवाम्। जपं कुर्य्यात् धिया मन्त्री ध्यानस्थः सुजितेन्द्रियः॥५९॥
रुद्राक्षैर्न्निर्मिता माला सर्वकामप्रसाधिनी। स्फाटिकैर्निर्मिता माला सर्वसिद्धिप्रदायिनी॥६०॥
मौक्तिकैः सम्भवा माला सौभाग्यश्रीप्रसाधिनी। मन्त्रप्रत्यक्षदा चाऽन्या पद्मरागोद्भवा तथा॥६१॥
सौवर्णी राजती माला सर्वान् कामान्प्रयच्छति। संख्यां कुर्य्यात्ततो बाह्ये यज्जप्तं सफलं भवेत्॥६२॥
असंख्यातञ्च यज्जप्तं तत्सर्वं निष्फलं भवेत्। तस्माद्यत्नेन कर्त्तव्या जपसंख्या च[९] धीमता॥६३॥
ततो जपं समर्प्याघ्यं दद्यादेवाय मन्त्रवित्। स्तोत्रं कुर्यात्ततो मन्त्री सर्वकामार्थसिद्धये॥६४॥
गृहस्थानामयं धर्मो योगिनामन्य ईरितः॥६५॥

गृहेषु यद्धर्म कृतं सुधीरैः समीरितं तद्धि गृहस्थधर्मः।
पीठे च तीर्थे गिरिशेखरे च तद्योगधर्मो[१०] वरयोगिभिर्यः॥६६॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे गृहस्थधर्मो नाम दशमोऽध्यायः॥१०॥

---

मन्त्रज्ञ व्यक्तिले छाती, निधार, शिर, काँध, आँखा र हात यी छ अङ्गको न्यास गर्नुपर्छ। त्यसपछि मनमनै आपोहिष्ठा इत्यादि मन्त्रको स्मरण गर्दै फूल मिसिएको अर्घ्य सूर्यलाई दिनुपर्छ। त्यसपछि जितेन्द्रिय भएर ध्यान गर्दै शास्त्रोक्त मणिको माला लिएर मनमनै जप गर्नुपर्छ॥५७-५९॥

जप गर्दा रुद्राक्षको मालाले सबै कामना पूर्ण गर्छ र स्फटिकद्वारा रचिएको मालाले सबै सिद्धि दिन्छ। मोतीको मालाले सौभाग्य र लक्ष्मी दिन्छ भने पद्मरागमणिको मालाले मन्त्रलाई प्रत्यक्ष गराउँछ। सुन र चाँदीको मालाले सबै काम सिद्ध हुन्छन्। गनेर गरेको जप फलदायी र नगनीकन गरेको जप व्यर्थ हुने हुँदा जप गर्दा बुद्धिमान्ले प्रयासपूर्वक जपसंख्या गन्नुपर्छ॥६२-६३॥

त्यसपछि जप गर्ने व्यक्तिले जप समर्पण गरेर देवतालाई अर्घ्य दिनुपर्छ। सबै कार्यको सिद्धिका निमित्त स्तोत्रपाठ गर्नुपर्छ। यो सबै गृहस्थहरूको धर्म हो। योगीको धर्म अर्कै छ। मानिसहरूले घरमा जुन धर्म गर्छन् त्यो गृहस्थधर्म हो भनेर भनिएको छ। श्रेष्ठ योगीहरूले पीठ, तीर्थ र पर्वतका शिखरमा रहेर जुन धर्म गर्छन् त्यसलाई योगधर्म भनिएको छ॥६४-६६॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गत हिमवत्खण्डमा गृहस्थधर्मको वर्णन नामक दशम अध्याय पूर्ण भयो।

---

९. संख्या जपस्य, इति न.सं.पु.पाठः।
१०. तदयोगधर्मम्, इति न.सं.पु.पाठः।

# एकादशोऽध्यायः

## विभूतिरुद्राक्षवैशिष्ट्यम्

स्कन्द उवाच

अथ धर्मं प्रवक्ष्यामि योगिनाञ्च विशेषतः। ब्राह्मे चोत्थाय योगीशः स्मरन् वै गुरुमीश्वरम् ॥१॥
शौचं कृत्वा ततो योगी सिद्धक्षेत्रे समासने। ऋजुकायः समासीनः प्राङ्मुखो वा ह्युदङ्मुखः ॥२॥
एकं पादमथैकस्मिन् विन्यस्योर्वोश्च संस्थितम्। इतरस्मिँस्तथा चोर्वोर्योगासनमुदाहृतम् ॥३॥
विभूतिं च समादाय मन्त्रयन्मन्त्रविद् बुधः। तर्पयेच्च गुरुं देवमात्मानं वै प्रलेपयेत् ॥४॥
ब्रह्मरन्ध्रे सदा पूर्वं ललाटे च त्रिपुण्ड्रकम्। कण्ठे चैव कटौ देशे हृदये स्कन्धयोस्तथा ॥५॥
नाभौ पृष्ठे तथाऽगस्त्य कूर्परयोस्तथा परे। मणिबन्धनयोर्योगी नितम्बकटिदेशयोः ॥६॥
आब्रह्मरन्ध्रपादान्तं योगिनामाप्लवो मतः। नाभेरूर्ध्वं गृहस्थानां यतीनाञ्च विशेषणम् ॥७॥
एवं स्नात्वा महायोगी रुद्राक्षान्धारयेत्ततः। आत्मानमात्मना योगी ध्यायेत्तमीश्वरं परम् ॥८॥
हृत्पद्मे वसुपत्रैर्वै कर्णिकायां सुकेसरे। प्रणवरूपमाद्यन्तमङ्गुष्ठमात्रमीश्वरम् ॥९॥
प्राणायामत्रयं कुर्यात्ततो योगी सुनिश्चलः। पूरयेदिडया वायुं पिङ्गलया च कुम्भयेत् ॥१०॥
रेचयेच्च तया नूनं ब्रह्मरन्ध्रं सुषुम्णया। निरालम्बस्तदा योगी परं योगमवाप्नुयात् ॥११॥
स्नापयेन्मानसेनेशं मानसेन प्रपूजयेत्। क्षौमैश्च मानसोद्भूतैर्मानसाद्यैश्च चन्दनैः ॥१२॥
मानसोत्फुल्लपुष्पैस्तं धूपैर्दीपैश्च मानसैः। नैवेद्यैर्मानसोत्पन्नैर्मानसैः प्रवरैर्जपैः ॥१३॥

---

### अध्याय- ११
### भस्म र रुद्राक्षको महिमा वर्णन

कार्तिक स्वामीले भन्नुभयो – अब खास गरी योगीहरूको धर्म बताउँछु। योगीले सर्वप्रथम ब्राह्ममुहूर्तमा उठेर ईश्वरस्वरूप गुरुको ध्यान गर्नुपर्छ। त्यसपछि सिद्धक्षेत्रमा शरीर सोझो पारी पूर्व तथा उत्तरतर्फ फर्किएर सम आसनमा बस्नुपर्छ। एउटा पाउ अर्को तिघ्रामा, अर्को पाउ अर्को तिघ्रामा राखेर गरिने आसनलाई योगासन भनिएको छ। त्यस्तो योगासनमा बसी विभूति लिएर मन्त्रोच्चारणपूर्वक गुरु र देवतालाई तृप्त तुल्याउँदै आफ्नो शरीरमा घस्नुपर्दछ ॥१-४॥

पहिले ब्रह्मरन्ध्रमा भस्मलेपन गर्नुपर्छ। त्यसपछि निधारमा त्रिपुण्ड्र भस्म लगाउनुपर्छ, अनि क्रमशः घाँटी, कम्मर, छाती, काँध, नाइटो, पीठ्यूँ, कुहिनो र नाडीमा भस्म लगाई ब्रह्मरन्ध्रसम्म भस्म लगाउनुपर्छ। यो योगीहरूको भस्मस्नान विधि हो। गृहस्थहरूले नाभिदेखि माथि र योगीहरूले अहिले बताए बमोजिम भस्मलेपन गर्नुपर्छ। यसरी भस्मले स्नान गरिसकेपछि रुद्राक्षको माला धारण गरेर आठ पत्र र केसरयुक्त हृदयकमलको कर्णिकामा प्रणवस्वरूप भएको अङ्गुष्ठ बराबरको ईश्वरस्वरूप आत्मालाई मनले ध्यान गर्नुपर्छ ॥५-९॥

त्यसपछि योगीले निश्चल भएर तीन पटक प्राणायाम गर्नुपर्छ। यसो गर्दा उसले इडा (चन्द्रनाडी) ले वायुलाई भित्र तानेर भर्ने काम गर्नुपर्छ। पिङ्गला (सूर्यनाडी) ले भित्र भएको वायुलाई रोक्नुपर्छ। सुषुम्णा नाडीले भित्रको वायुलाई बाहिर फाल्नुपर्छ। प्राणायाम गरेपछि निरालम्ब योगीले योगलाई प्राप्त गर्न सक्छ। हे अगस्त्य मुनि ! योगीले ईश्वरलाई मानसिक जलले स्नान गराएर मानसिक पूजा गर्नुपर्छ। मनबाटै कल्पना गरिएका नैवेद्य, रेशमी वस्त्र, चन्दन, फूल, धूप, बत्ती र नैवेद्य चढाउनुपर्छ र मनले उत्तम जप गर्नुपर्दछ ॥१०-१३॥

तैः षट्[1] स्थानोद्भवैर्वर्णैरक्षरैश्चैव मन्त्रवित्। क्रमव्यतिक्रमैर्द्धीरो जपेन्मन्त्रं धिया मुने ॥१४॥
नमोऽन्तं तारपूर्वं च[2] शिवायेति ततः परम्। मुमुक्षुः प्रजपेन्मन्त्रं दुःखसंसारतारकम्॥१५॥
शिवशक्त्या समायुक्तं मन्त्रं षडक्षरं परम्। षट्स्वरैः संयुतं बीजं सतारकं जपेद् बुधः ॥१६॥
इति योगं परं विद्धि योगिनां च महात्मनाम्[3]। एवं यः कुरुते योगी जीवन्मुक्तो न संशयः ॥१७॥
षड्तृतुषु[4] यथायोग्यं मानससम्भवैर्मुने। पूजयेदुपचारैस्तं काले काले यथोद्भवैः ॥१८॥

अगस्त्य उवाच

अद्भुतं भवतोक्तं मे सर्वेषां प्राणिनां[5] तथा। योगिनां शक्तिधृक् स्नानं प्रशस्तञ्च विभूतिभिः ॥१९॥
कस्माच्च तत्समुद्भूतं फलं च कीदृशं भवेत्। भस्मस्नायी च को मुक्तः स्कन्द तद्वद मेऽधुना ॥२०॥

स्कन्द उवाच

शृणु कुम्भज वक्ष्यामि पृष्टं यद्भवता हि माम्। तस्य श्रवणमात्रेण भस्मस्नानफलं लभेत् ॥२१॥
त्रैलोक्यं भीमरुद्रेण प्रज्ञानलेन चक्षुषा। यदा दग्धीकृतं कल्पे तस्माद् भस्म प्रचक्षते ॥२२॥
तद्भस्म च समादाय रुद्रेणाङ्गं प्रलेपितम्। दूरीकृतं जलस्नानं तस्माद् भस्म प्रशस्यते ॥२३॥
देवर्षियोगिसिद्धाश्च समाप्लाव्य च भस्मभिः। प्राप्नुवन्ति परं क्षिप्रं पूतै रुद्रेक्षणोद्भवैः ॥२४॥
न भस्मनः परं[6] स्नानं न मोक्षो भस्मनः परम्। नास्ति भस्मासनात् स्थेयं नास्ति भस्मार्चनात्परम्॥२५॥
न पापैर्लिप्यते धीरो भस्मस्नायी शिवात्मकः। पातकैः पञ्चभिश्चाऽपि ब्रह्महत्यादिभिस्तथा ॥२६॥
अभक्ष्यभक्षको मर्त्यो भस्मस्नायी भवेद्यदि। तत्पापैर्ल्लिप्यते नैवमगम्यागमनादपि ॥२७॥
मिथ्याख्यानोद्भवैः पापैर्वचोभिर्निन्दनोद्भवैः[7]। असत्यैर्मर्मसंस्पृग्भिर्निह्नवैः स न लिप्यते ॥२८॥

---

छ ठाउँबाट उत्पन्न भएका वर्ण तथा अक्षरहरूले युक्त मन्त्रलाई उल्ट्ये र सुल्ट्ये गरी मानसिक रूपमा जप्नुपर्छ। मोक्ष चाहने योगीले दुःखात्मक संसारबाट उतार्ने शिवशक्त्यात्मक अक्षरको प्रणवयुक्त छ अक्षरले बनेको ॐ नमः शिवाय भन्ने मन्त्र जप्नुपर्छ। महात्मा योगीहरूका मिति यही नै उत्तम योग हो। जसले यो योग गर्छ, त्यो योगी जीवन्मुक्त हुन्छ। यसमा कुनै शङ्का छैन। हे अगस्त्य ! छवटै ऋतुमा ऋतुअनुसार समय–समयमा पैदा हुने फूलफल आदि कल्पित मानसिक सामग्रीले ईश्वरको पूजा गर्नुपर्छ ॥१४–१८॥

अगस्त्यले भन्नुभयो– हे कार्तिक स्वामी ! सबै प्राणीहरू विशेष गरी योगीहरूले गर्नुपर्ने विभूतिस्नानको विषयमा हजुरले मलाई बताउनुभयो। यो विभूति कताबाट निस्क्यो ? विभूतिस्नानको फल के हो ? विभूतिस्नानले को मुक्त भयो ? अब त्यो सबै मलाई बताउनुहोस् ॥१९–२०॥

कार्तिक स्वामीले भन्नुभयो– हे अगस्त्य मुनि ! तपाईंले जुन कुरा मसित सोध्नुभयो, त्यो म भन्दछु, सुन्नुहोस्। यो सुन्नाले मात्र पनि भस्मस्नानको फल प्राप्त हुन्छ। जब भीषण रुद्रका ज्ञानाग्नियुक्त आँखाबाट निस्किएको अग्निले त्रैलोक्यलाई भस्म गऱ्यो त्यसै समयदेखि विभूतिको भस्म भन्ने नाम रहेको हो। त्यही भस्मलाई लिएर भगवान् शङ्करले आफ्नो शरीरभरि लगाउनुभयो र जलस्नान छोड्नुभयो। त्यसैले भस्मको ठूलो प्रशंसा गरिएको छ। देवता, ऋषि, योगी र सिद्धहरू रुद्रनेत्रबाट उत्पन्न पवित्र भस्मले स्नान गरेर छिट्टै परमात्मालाई प्राप्त गर्दछन्। भस्मस्नानभन्दा ठूलो स्नान छैन, भस्मबाट नपाइने मोक्ष हुँदैन, भस्मासनभन्दा ठूलो आसन छैन, भस्मबाट गरिने पूजाभन्दा ठूलो अरू कुनै पूजा हुँदैन। भस्मस्नान गर्ने व्यक्ति शिवस्वरूप नै हुने भएकाले शास्त्रमा बताइएका ब्रह्महत्या आदि गरिएका पाँच महापातकहरूबाट लिप्त हुँदैन । अभक्ष्य वस्तु खाने र अगम्या स्त्रीमा गमन गर्ने मानिस पनि यदि भस्मस्नायी छ भने त्यस किसिमको पापबाट त्यो लिप्त हुँदैन। त्यस्तै भस्मस्नायी व्यक्ति झुटो प्रचार, परनिन्दा, असत्य बोली, मर्म छुने आघात र ढाँट्ने कार्य आदि गर्दा लाग्ने पापबाट लिप्त हुँदैन ॥२१–२८॥

---

१. षण्णाम्, इति न.सं.पु.पाठः। २. तारपूर्वो नमश्चान्तः, इति न.सं.पु.पाठः। ३. परमात्मनाम्, इति न.सं.पु.पाठः।
४. षड्तूनाम्, इति न.सं.पु.पाठः। ५. जीविनाम्, इति न.सं.पु.पाठः। ६. नास्ति भस्मात्परम्, इति न.सं.पु.पाठः।
७. पापैर्निन्दोद्भवैश्च वाचनैः, इति न.सं.पु.पाठः।

आसीत्कश्चिद् द्विजश्रेष्ठः सर्वविद्यासु पारगः। विष्णुभक्त, इतिख्यातश्चाऽन्तर्वेदिपुरोत्तमे ॥२९॥
षट्कर्मनिरतो विप्रो वेदपाठे हि तत्परः। सत्यशीलस्तपःक्लिष्टो दयालुः[८] सर्वजन्तुषु ॥३०॥
हव्यकव्यक्रियाचारात् पुण्यवानर्चने रतः। दानशीलोऽभवच्छश्वदतिथीनां प्रियङ्करः ॥३१॥
तस्य पुत्रो द्विजश्रेष्ठो विष्णुदास, इति श्रुतः। विद्याहीनो महाकष्टी पितरि पञ्चतां गते[९] ॥३२॥
सर्वाचारः सदा लोकैः सर्वभक्षी विडम्बनः। परयोषित्प्रियोऽजस्रं परद्रव्यापहारकः ॥३३॥
निशाचरो दिवासुप्तो वेश्यागमनतत्परः। सर्वजनैः सगोत्रैश्च विवर्जितो घटोद्भव ॥३४॥
म्लेच्छः शठो मृतः पूर्वं वाग्वतीसुतटे मुने। तत्पुण्यतोऽभवद्विप्रः श्रोत्रियः कर्मनिन्दकः ॥३५॥
एकदा दिवसे विप्रो बहुक्षुधाप्रपीडितः। बाह्यदेशेऽपि चौर्येण कुत्राऽप्यन्नमलब्धवान् ॥३६॥
याचितवाँस्तदा रात्रौ भार्यां प्रत्यशनं द्विजः। परिभ्रम्य निशायां स देशं ग्रामं गृहं प्रति ॥३७॥

विष्णुदास उवाच

प्रिये हे सुतपे साध्वि देह्यन्नं मे च साम्प्रतम्। तीक्ष्णक्षुधानलार्त्तोऽहं येन जीवं प्रधारये ॥३८॥
बाह्याभ्यन्तरमागारेषूद्भ्रान्तं परितो बहु[१०]। कुत्राप्यन्नं न लब्धञ्च सोऽहं श्रमातुरः प्रिये ॥३९॥

सुमुख्युवाच

सत्यमुक्तं प्रियेणाद्य पीडितोऽसि क्षुधानलैः। भ्रमन् परिश्रमाद्दुःखी प्रभो त्वं नाऽत्र संशयः ॥४०॥
सदोहदाऽहं नैवाऽन्नं भुक्तं मया[११] शपे प्रिय। नास्ति किमन्नमागारे किं दास्ये ते क्षमस्व मे ॥४१॥

---

अन्तर्वेदी नामका उत्तम सहरमा सबै विद्यामा पारङ्गत भएका विष्णुभक्त नाम गरेका कुनै ब्राह्मण थिए। उनी षट्कर्ममा संलग्न, वेद पढ्नमा तत्पर, सत्यवादी, तपस्याको दुःखलाई सहन सक्ने, जितेन्द्रिय र सबै प्राणीहरूका प्यारा थिए। पूजा गर्न सिपालु ती ब्राह्मण देवताको हवन र पितृहरूको श्राद्धकर्म गर्दथे। अतिथिका प्रिय बनेका ती विप्र दानी भए ॥२९-३१॥

ती ब्राह्मणको विष्णुदास नामको विद्याविहीन छोरो थियो। बाबु परलोक भएपछि त्यसले ठूलो दुःख पायो। सबै जातिका साथमा रहेर त्यो सबै किसिमको आचरण गर्दथ्यो, सबै थोक खान्थ्यो र पाखण्डी थियो। त्यसले सधैँ अर्काकी पत्नीलाई मन पराउँथ्यो र अर्काको सम्पत्ति हरण गर्थ्यो। हे अगस्त्य मुनि ! त्यो रातभर हिँड्ने र दिनमा सुत्ने गर्थ्यो। सधैँ वेश्यागमन गर्थ्यो। त्यसैले सर्वसाधारण मानिस र सगोत्री सबै दाजुभाइहरूले त्यसलाई त्यागिदिए ॥३२-३४॥

हे अगस्त्य मुनि ! त्यो विष्णुदास पूर्वजन्ममा म्लेच्छ र मूर्ख थियो। वाग्वतीका किनारमा मरेको हुनाले त्यस पुण्यको प्रभावले गर्दा पछिल्लो जन्ममा निन्दित कर्म गर्ने ब्राह्मण हुन पुगेको हो। कुनै समयमा देश, गाउँ तथा घर-घरमा राति घुमेर चोर्ने काम गर्दा पनि बाहिर कतै अन्न नपाएकाले भोकले असह्य भएर घरमा आई त्यसले आफ्नी पत्नीसित खाने कुरा माग्यो ॥३५-३७॥

विष्णुदासले भन्यो - हे तपस्विनी ! हे प्रिया ! हे साध्वी ! राज्यका धेरै भागमा सबै घरमा बाहिर-भित्र घुमियो, कतै पनि अन्न पाइएन, म परिश्रमले थाकेको छु, भोकको तीखो ज्वालाले मलाई सताइरहेको छ। त्यसैले यस्तो अवस्थामा मलाई खानेकुरा देऊ, जसबाट मेरो प्राण थामिनेछ ॥३८-३९॥

सुमुखीले भनिन्- हजुरले साँचो कुरा भन्नुभयो। हजुर भोकरूपी अग्निले अत्यन्त पीडित हुनुहुन्छ। हे प्रभो ! घुम्दा-घुम्दा पर्न गएको परिश्रमले थकित हुनुभएको छ। यसमा शङ्का छैन। परन्तु गर्भवती भएकी मैले पनि आज केही खाएकी छैन, म किरिया हालेर भन्दछु। घरमा केही छैन, म के दिऊँ ? मलाई माफ गर्नुहोस् ॥४०-४१॥

---

८ दान्तश्च, इति न.सं.पु.पाठः। ९. विद्याहीनो महत्कष्टी पञ्चत्वे च पितर्यभूत्, इति न.सं.पु.पाठः।
१०. वात्याभ्यन्तरमागारं भ्रान्तं च बहु राष्ट्रकम्, इति न.सं.पु.पाठः। ११. मया सदोहदयाप्यद्य नान्नं भुक्तं शपे प्रिय, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

इत्याकर्ण्य वचो विप्रः सुतथ्यमप्यतथ्यभाक्। भार्यया मधुभाषिण्या[१२] क्रोधेन मूर्च्छितो भृशम् ॥४२॥
क्षुधाप्रपीडितः क्रोधी भार्य्यां मधुरभाषिणीम्। कुक्षिमुद्दिश्य पादेन भर्त्सयँश्च जघान ताम् ॥४३॥
मृतां भार्यां सगर्भां तां गृहे त्यक्त्वा च तत्क्षणम्[१३] । निर्ययौ स पुरद्वारात्पापिष्ठश्च ततो बहिः ॥४४॥
भ्रमति स्म ततो भ्रष्टो देशाद्देशान्तरं बहु। तस्करवृत्तिमास्थाय कञ्चिदब्दञ्च नीतवान् ॥४५॥
एकदा नगरे पापी कृतवान् धनचौर्यकम्[१४] । धृत्वा लोकाः प्रबन्ध्याशु ताडयन्ति स्म तं बहु ॥४६॥
ततो रात्रौ प्रमुच्याशु दशनै रज्जुकं रहः। प्रदुद्राव बहिः पापी स्थानं चिन्तितवान् वने ॥४७॥
ततो वनेषु पापिष्ठ उवास स निरन्तरम्। निहत्य पथिकाँस्तत्र काँश्चिन्मासान् निनाय सः ॥४८॥
अलब्ध्वैकदिने मर्त्यान् गां चैव हतवान् पुनः। अनिवेद्य च पितृन् तत् पापी मांसं जघास ह[१५] ॥४९॥
भ्रमति स्म ततः पापी प्रोन्मत्तवद्वनाद्वनम्। क्षुधानलकृशाङ्गश्च तृषातुरश्च कुष्ठवान् ॥५०॥
तत एकाकिनं विप्रं पथि यान्तं ददर्श सः। भिक्षार्थिनं महादीनं निःस्वं तथैकवाससम् ॥५१॥
दूराच्छरेण पापिष्ठो जघान पथिकं वने। हत्वा ततस्तदङ्गेषु चाऽन्वेषयद् वसूनि च ॥५२॥
भ्रष्टः कृत्वा किमस्तीति न दृष्ट्वा वसु किञ्चन[१६] । ततो ददर्श रुद्राक्षं मूर्धन्येकादशाननम् ॥५३॥
तं समादाय रुद्राक्षं स्वमूर्ध्नि च बबन्ध सः। पातकैः पञ्चभिर्युक्त उन्मत्तवद्भ्रमन् महीम् ॥५४॥
ततोऽगमद्धिमाद्रेः स सानौ गिरिविलङ्घनः[१७] । तत्र कुशेश्वरो देवः स्वयम्भूस्तेजसां परः ॥५५॥

---

कार्तिक स्वामीले भन्नुभयो – यो कुरा सुनेर आफ्नी पत्नीले भनेको तथ्य कुरालाई पनि झूठो ठानी रिसले अत्यन्त मूर्छित हुँदै भोकले रन्थनिएको त्यस रिसाहाले राम्रो मीठो बोल्ने गर्भिणी पत्नीलाई कोखामा लात्तीले हिर्काएर मार्‍यो र मरेकी ती गर्भिणी पत्नीलाई त्यसै ठाउँमा छोडी त्यो पापी सहरको ढोकाबाट बाहिर निस्कियो। त्यसपछि त्यो भ्रष्ट्यचारी चोर ब्राह्मण एक देशबाट अर्को देश गर्दै धेरै ठाउँमा घुम्यो र तस्करको वृत्ति अपनाएर केही वर्ष बितायो ॥४२–४५॥

एक दिन त्यस पापीले सहरभित्र पसेर धन चोर्‍यो। जनताले त्यसलाई समातेर बेस्सरी पिटे। रातमा सुनसान भएको मौका छोपी दाँतले टेकेर हत्त न पत्त डोरी फुकाई त्यो ब्राह्मण सहरबाट बाहिर निस्कियो र वनतिर जाने विचार गर्‍यो। त्यसपछि त्यो सधैं वनमा गएर बस्न थाल्यो। त्यहाँ बाटो हिँड्ने मानिसहरूलाई मारेर केही महिना उसले बितायो ॥४६–४८॥

एक दिन उसले मानिसलाई पाएन र गाईलाई मार्‍यो। त्यस पापीले पितृलाई अर्पण नगरीकन त्यो मासु खायो। भोकरूपी आगाले गर्दा दुब्लो भएको र तिर्खाले आत्तिएको कुष्ठरोगी त्यो पापी बहुलाजस्तै भएर वनवनै घुम्न थाल्यो। त्यसले भिक्षा माग्न निस्केका, एक्लै बाटामा हिँडिरहेका, अत्यन्त दुःखी, एउटा धोती मात्र लगाएका, गरीब ब्राह्मणलाई देख्यो र ती बटुवा ब्राह्मणलाई टाढैबाट बाण हानेर मार्‍यो अनि तिनका शरीरमा धन खोज्न थाल्यो। त्यसपछि त्यस भ्रष्टले के रहेछ भनेर त्यसो गर्दा केही सम्पत्ति पाएन, ती ब्राह्मणको शिरमा एघारमुखे रुद्राक्ष मात्र देख्यो। बहुला झैं पृथ्वीमा घुम्ने त्यो पञ्च पातकीले त्यो एघारमुखे रुद्राक्षको दाना आफ्नो शिरमा बाँध्यो। त्यसपछि हिमालयका पहाडहरू नाघ्दै आफैं उत्पन्न भएका स्वयम्भूरूप उत्कृष्ट कुशेश्वर महादेवको लिङ्ग भएको स्थानमा गयो ॥४९–५५॥

---

१२. मधुरोक्तायाः, इति न.सं.पु.पाठः।
१३. च साम्प्रतम्, इति न.सं.पु.पाठः।
१४. कृतवाँस्तेयमर्थकम्, इति न.सं.पु.पाठः।
१५. पैत्रे तन्मांसं जघास पापवान्, इति न.सं.पु.पाठः।
१६. किमप्यदर्शितं वसु, इति न.सं.पु.पाठः।
१७. लङ्घितः, इति न.सं.पु.पाठः।

तत्र प्रवहति स्वच्छा कौशिकी च सरिद्वरा। सङ्गमे इन्द्रवत्याश्च ह्यादिलिङ्गं विराजते ॥५६॥
प्राप्तवान् कौशिकीतीरमाभ्रम्य स वनाद्वनम्। पञ्चपापैर्निषिद्धात्मा कुष्ठग्रस्तः[१८] सवेपथुः ॥५७॥
तद्दर्श महालिङ्गं पूजितं मुनिना मुदा। फलमूलोपहारैश्च सह पञ्चोपचारकैः ॥५८॥
तपोऽसिते मुने पक्षे त्रयोदश्यां महानिशि। ऋषिणा कुशनाम्ना वै विनिद्रेण च पूजितम् ॥५९॥
तत्र स चिन्तयामास स्तेयी तमुपचारकम्। कथं गृह्णामि भक्ष्याणि[१९] तत्राहं भोजनाय च ॥६०॥
एकाकी स्नातकस्तत्र चैकाकिनं हि मां तदा। ताडयिष्यति कोपाच्चेदपि भोक्ष्यामि तद्[२०] बलात् ॥६१॥
क्षुधया पीडितं मा स ताडयिष्यति किं[२१] यदि। दीनं प्रेक्ष्याथवा नासौ भक्ष्यं मोक्ष्यामि नैव तत्[२२] ॥६२॥

स्कन्द उवाच

एवं विमृशन् दुष्टोऽसौ[२३] भ्रष्टः स्वान्तेन कुम्भज। वेपमानः कृशाङ्गश्च ह्यभ्यगच्छत्तदन्तिकम् ॥६३॥
ध्यातवति मुनौ रात्रौ जपचिन्तापरायणे। लिङ्गान्तिकं शनैर्गत्वा स जहार बलीन्बलात् ॥६४॥
ततो मुनेर्भयाद् भ्रष्टः कम्पयुक्तो व्यलोडयन्। लिङ्गोपरि ललाटस्य घर्षणं कृतवान्[२४] द्विजः ॥६५॥
लिङ्गस्पर्शेन तद्भाले तद्विभूत्या प्रलेपितः। शनैरुत्थाय कम्पात्मा भयाकुलः सुविह्वलः ॥६६॥
संस्पृश्य[२५] मणिबन्धाभ्यां लिङ्गाद् भस्माङ्कितौ करौ। बलीनानीय पापिष्ठो बहिरागत्य भुक्तवान् ॥६७॥
शिवक्षेत्रे पातकानि स्थितानि पञ्च यानि तु[२६]। सम्प्रेक्ष्य तादृशं तं च वञ्चयितुं समाव्रजन् ॥६८॥
तानि च[२७] मायया दिव्यं चाऽन्नं बहुरसञ्च तम्। लोभयितुं च सन्दर्श्य तमारूढानि यत्नतः[२८] ॥६९॥

---

त्यस ठाउँमा स्वच्छ नदीश्रेष्ठ कौशिकी बगेको छ। कोशी र लीलावती (रोशी) को सङ्गममा त्यो आदिलिङ्ग विराजमान छ। पञ्चपातकले युक्त, थर्थर काम्ने महारोग लागेको, कुष्ठरोगले ग्रस्त त्यो पापी वनवनै घुम्दै कोशीको किनारमा पुग्यो ॥५५-५७॥

हे अगस्त्य मुनि ! त्यो पापी माघकृष्ण त्रयोदशीका दिन आधा रातमा जाग्यो। उसले कुश नामका ऋषिले फल, कन्दमूल आदि पूजा सामग्री लिएर आनन्दसित पञ्चोपचारले पूजा गर्न लागेको कुशेश्वर महादेवको लिङ्ग देख्यो। त्यहाँ त्यस चोरले "नैवेद्यका लागि ऋषिले तयार पारेका ती खानेकुरा म कसरी ग्रहण गरूँ ? चढाएको नैवेद्य म कसरी चोरूँ ? पूजारी एक्लै छ, म पनि एक्लै छु, उसले मलाई रीसले चुट्नेछ, चुटाइलाई सहेर पनि ती चढाइएका पूजा सामग्रीहरू जबर्जस्ती खान्छु, भोकले हुरुक्क भएको मलाई बेसरी पिट्यो भने पनि, दुःखी देखेर पिटेन भने पनि ती पूजाका सामग्री (नैवेद्य) लाई म कसैगरी पनि छोड्नेछैन" भन्ने विचार गर्‍यो ॥५८-६२॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! मनमनै यस्तो विचार गरेर दुब्लो त्यो भ्रष्ट बाहुन काँप्दै तिनको नजिकै गयो। राति ऋषि जप, चिन्तन र ध्यानमा संलग्न भएको अवस्थामा त्यस भ्रष्टले बिस्तारै शिवलिङ्गको नजिकै गएर चढाएको नैवेद्य जबर्जस्ती हरण गर्‍यो। त्यसपछि मुनिका डरले काँप्दै, लर्खराउँदै गएको त्यो भ्रष्ट ब्राह्मण शिवलिङ्गमाथि टाउको ठोकाठन पुग्यो ॥६३-६५॥

लिङ्गको स्पर्शले गर्दा त्यसको शिरमा विभूति लाग्यो, बिस्तारै उठेर डरले काँप्दै विह्वल भएर मणिबन्धले लिङ्गमा स्पर्श गर्दा दुबै हातमा विभूति धसियो। त्यस पापीले नैवेद्य लिएर बाहिर आई खायो। शिवक्षेत्रको परम पावन प्रदेशमा रहने पञ्चपातकहरू त्यस्तो पापीलाई देखेर त्यसलाई ठग्न आए। त्यसपछि त्यहाँ रहेर पञ्चपातकहरूले माया रच्दै अनेक किसिमका रसले युक्त भएको दिव्य खाना देखाई त्यसलाई लोभ्याउने प्रयास गरे ॥६६-६९॥

---

१८. पञ्चपापैर्निषिद्धात्मा कुष्ठव्रणी, इति न.सं.पु.पाठः।
१९. भक्ष्यांस्तान्, इति न.सं.पु.पाठः।
२०. ताडिष्यति सकोपं चेत्सह्यो भोक्ष्यामि तान्, इति न.सं.पु.पाठः।
२१. माञ्च ताडिष्यति भृशम्, इति न.सं.पु.पाठः।
२२. न मोक्ष्यामि तथा च तान्, इति न.सं.पु.पाठः।
२३. विमृष्यमाणोऽसौ, इति न.सं.पु.पाठः।
२४. ललाटं तद् घर्षितवास्तदा, इति न.सं.पु.पाठः।
२५. संस्पर्श्य, इति न.सं.पु.पाठः।
२६. शिवक्षेत्रपरोद्देशे संस्थिताः पञ्चपातकाः, इति न.सं.पु.पाठः।
२७. ततस्ते, इति न.सं.पु.पाठः।
२८. तमारुढा यथान्तिरे, इति न.सं.पु.पाठः।

पापानि ऊचुः

रेरे भ्रष्टाधुना तुभ्यं दिव्यमन्नमिदं वरम्। समानीतमिहास्माभिस्त्वत्स्नेहाच्च प्रपश्यताम् ॥७०॥
क्षुधया पीडितो विप्र ! कृशाङ्गश्चैव सव्रणः[२९] । सहायका भविष्यामो ज्ञात्वानीतमिति ध्रुवम् ॥७१॥
कुरु स्नानं जले विप्र भस्म धारय भालगम्[३०] । त्वच्छिरःस्थञ्च रुद्राक्षं प्रक्षिप्यतां जलेऽधुना ॥७२॥
कृत्वैवं विप्र शौचं त्वं भस्मरुद्राक्षवर्ज्जितः। भुङ्क्ष्व यथेप्सितं चान्नं प्रियमित्र[३१] गृहाण वै ॥७३॥

भ्रष्ट उवाच

नाहं भुञ्जामि चाद्यान्नं यदि चतुर्विधं वरम्। समानीतं च युष्माभिर्मत्स्नेहाच्च सुहृज्जनाः[३२] ॥७४॥
फलाशनं मया नीतं नानाविधरसोत्तमम्। भूतेश्वरप्रसादं तदृषेरनुग्रहात्तथा ॥७५॥
व्रणी कम्पी कृशाङ्गश्च नाहं स्नातुं च शक्तवान्। न त्यजामि च रुद्राक्षं भस्म स्नातुं न शक्तवान् ॥७६॥
रात्रौ भुक्तं सुखं पूर्णमतस्तृप्तः फलानि च। श्वो यद्ददानि भूतेशो भोक्ष्यामि तन्न संशयः ॥७७॥

स्कन्द उवाच

भस्मरुद्राक्षलिङ्गानां पुण्येन स्पर्शजेन[३३] सः। निष्पापो ज्ञानवान् भ्रष्टः शङ्करात्मा बभूव हि ॥७८॥
ततः श्रुत्वा वचस्तानि निराशासंकुलानि हि। स्थातुं न शेकुः पापानि स्प्रष्टुं चापि तदा मुने[३४] ॥७९॥
भस्मेशाक्षकमङ्गेषु प्रेक्ष्य भ्रष्टस्य तानि तु[३५] । तत्रैव भुवि लीनानि बभूवुर्भीषया मुने[३६] ॥८०॥
ततः सोपि द्विजो भ्रष्टः पञ्चत्वं प्राप्तवान्निशि। कौशिकीतीरमासाद्य बहुशीतैः प्रपीडितः ॥८१॥

---

पापहरूले भने – हे भ्रष्ट ! हामीहरूले तिम्रो माया लागेर तिम्रा लागि यो मीठो खानेकुरा ल्याइदिएका छौं, हेर। हे ब्राह्मण ! तिमी भोकले आत्तिएका छौ, दुब्ला र रोगी छौ भन्ने थाहा पाएर यो खानेकुरा ल्याइदिएका छौं, हामी तिम्रो सहयोगी बन्छौं। हे ब्राह्मण ! पानीमा स्नान गर, टाउकाको खरानी पखालेर तिम्रो शिरमा रहेको रुद्राक्षलाई पानीमा फालिदेऊ। हे साथी ब्राह्मण ! यसरी सफा गरेर भस्म र रुद्राक्षलाई फालिदेऊ अनि मनलागे जति यो खानेकुरा भिकेर खाऊ ॥७०-७३॥

भ्रष्टले भन्यो – हे मित्र हो ! तपाईंहरूले मेरो स्नेहले चारै थरीको उत्कृष्ट खाना ल्याउनुभएको भए तापनि आज म खान्नँ। ऋषिको अनुग्रहबाट महादेवको प्रसादस्वरूप अनेकौं रसले युक्त भएको फलफूल मैले खाएँ ॥७५॥घाइते, काँप्ने र दुब्लो शरीर भएकाले म नुहाउन सक्दिनँ र रुद्राक्ष पनि फाल्दिनँ, खरानी पनि पखाल्न सक्दिनँ ॥७६॥ मैले राती आनन्दसँग चाहे जति फलफूल खाएँ र तृप्त भएँ। महादेवले भोलि जे दिनुहुन्छ, त्यही खान्छु, यसमा शङ्का छैन ॥७४-७७॥

कार्तिक स्वामीले भन्नुभयो – विभूति, रुद्राक्ष र शिवलिङ्गको स्पर्शले गर्दा त्यो बाहुन पापरहित, ज्ञानी र शङ्करस्वरूप भयो। हे मुनि ! त्यसपछि त्यसको वचन सुनेर पापहरू निराश भए, त्यस भ्रष्टसँग बस्न र त्यसलाई छुन पनि सकेनन्। भ्रष्टको शरीरमा खरानी र रुद्राक्ष देखेर डरले आत्तिएका ती पापहरू पृथ्वीमा दबिए। त्यसपछि त्यो भ्रष्ट बाहुन पनि धेरै ठण्डी भएको हुनाले त्यसबाट कठ्याङ्ग्रिएर राती कोशीको तिरमा पुगेर मऱ्यो ॥७८-८१॥

---

२९. ते क्षुधया पीडितो विप्रः कृशाङ्गी च व्रणी तथा, इति न.सं.पु.पाठः।
२९क. ते सहाया भवामो वै, इति न.सं.पु.पाठः।
३०. ललाटे भस्म धौत्य, इति न.सं.पु.पाठः।
३१. प्रियसखे, इति न.सं.पु.पाठः।
३२. मत्स्नेहादपि भोः सखाः, इति न.सं.पु.पाठः।
३३. भस्मरुद्राक्षसंस्पर्शाच्छिवलिङ्गं तथा हि, इति न.सं.पु.पाठः।
३४. ... स्पर्शितुं च तम् इति न.सं.पु.पाठः।
३५. पातकाः, इति न.सं.पु.पाठः।
३६. तत्रैव भुवि संलीनाः, इति न.सं.पु.पाठः।

तत्क्षणे यमदूतास्ते हिमालयाद्रिगह्वरे। समागतास्तमानेतुं बबन्धू रज्जुभिस्ततः ॥८२॥
तत्रैव शिवदूताश्च समाययुश्च तत्क्षणे। सूर्यायुतप्रतीकाशं विमानं समधिष्ठिताः ॥८३॥
यमदूतान् गर्हयन्तः[३७] प्रोत्क्षिप्य रज्जुमाशु ताम्। रुद्रकन्यान्विते याने तं समारोपयन्मुदा ॥८४॥
आरोपितं विमाने तं शिवदूतैः सुनिश्चितम्। गणा निन्युर्हि तं शैवं यानेन सूर्यवर्च्चसा ॥८५॥
सन्त्यज्य विग्रहं सद्यः परं मोक्षं स लब्धवान्। प्रेक्ष्य तेषां च चेष्टां ते चिन्तयन्ति स्म दुःखिताः ॥८६॥
तत उवाच कालोऽसौ तेभ्यो हि यमकिङ्करैः। विमृश्यादौ[३८] मिथो विप्रं दृष्ट्वा शिवबलान्वितम् ॥८७॥

काल उवाच

भो भोः शिवपरा भक्ताश्चैष दुष्टो हि नारकी[३९]। कथमारोपितो याने युष्माभिरविवेकतः ॥८८॥
पातकैः पञ्चभिर्ग्रस्तो भ्रष्टो स्वाचारजातितः। गोघ्नः स्त्रीघ्नः ब्रह्मघाती बालघ्नो[४०] नरहस्तथा ॥८९॥
अनेन न कृतं स्नानं जपपूजादिकं तथा। दानं शौचं तथा ध्यानं सत्कर्म न कृता क्रिया[४१] ॥९०॥
इत्थं पापाङ्कितो भ्रष्टो याने स्वारोपितः कथम्[४२]। अदत्त्वा नारकीं तस्मै यातनां दुःसहां विभो ॥९१॥
आदिष्टाश्चित्रगुप्तेन वयमत्र समागताः। आनीय तं द्विजं भ्रष्टं क्षिप्यतां नरकेषु च ॥९२॥
इत्यादेशं समादाय प्रभुणा प्रेरिता वयम्। आगता शिवदूता हे[४३] किं कुर्मः किङ्करा वयम् ॥९३॥

शिवदूता ऊचुः

न वक्तव्यं च युष्माभिः कुत्सितमस्य चेष्टितम् ॥९४॥
दूरीकृतानि पापानि शङ्करेण[४४] हि सर्वतः ॥९५॥
अनेन बहुपापानि कृतान्यत्र च सर्वदा। निष्पापोऽभूदसौ याम्याः शृणुत तस्य हैतुकम्[४५] ॥९६॥

---

त्यसपछि यमराजका दूतहरूले तुरुन्त हिमालय पहाडको गुफामा आएर यमलोक लैजान त्यसलाई डोरीले बाँधे। त्यसैबेला दश हजार सूर्यको जस्तो चहकिलो विमानमा बसेर शिवजीका दूतहरू पनि त्यहाँ आए। यमका दूतहरूलाई निन्दा गर्दै ती शिवजीका दूतहरूले तुरुन्त डोरी फुकाएर रुद्रकन्याले युक्त विमानमा खुसी हुँदै त्यसलाई चढाए। शिवजीका दूतहरूले सूर्यजस्तो तेजिलो विमानद्वारा त्यस ब्राह्मणलाई शिवलोकमा लगे। त्यस ब्राह्मणले तत्कालै सांसारिक वासनारूप विग्रह छोडेर उत्तम मुक्ति पायो। यमदूतहरू शिवजीका दूतहरूको क्रियाकलाप देखेर दुःखी हुँदै चिन्ता गर्न थाले। यमका दूतबाट ब्राह्मणलाई शिवजीका दूतले लान लागेको वृत्तान्त थाहा पाएर यमदूतहरूसँग परस्पर विमर्श गरी कालले भन्न लागे ॥८२-८७॥

कालले भन्यो – हे शिवका परमभक्त हो ! पाँच किसिमका पापले ग्रस्त, आफ्नो आचारबाट भ्रष्ट, गोहत्या, ब्रह्महत्या, स्त्रीहत्या, बालहत्या र नरहत्यामा संलग्न हुनाले नरक पर्नुपर्ने यस बाहुनलाई विचारै नगरी विमानमा कसरी राख्यौ ?। हे प्रभो ! यस बाहुनले स्नान, जप, पूजा, दान, शुद्ध आचार, ध्यान तथा सत्कृत्यहरू गरेको छैन। यस्तो भ्रष्ट पापी बाहुनलाई असहय नरकको यातना दिन छोडेर विमानमा कसरी राखियो ?। त्यस भ्रष्ट ब्राह्मणलाई ल्याएर नरकमा हाल भन्ने चित्रगुप्तको आदेश लिएर हामी यहाँ आएका छौं। हे शिवदूत हो ! हामी भृत्यहरू हौं, के गरौं ? ॥८८-९३॥

शिवजीका दूतहरूले भने – यस भ्रष्ट बाहुनको निन्दित चरित्रका बारेमा तपाईंहरूले भन्नुपर्ने कुरा केही छैन। यसका सम्पूर्ण पापहरूलाई भगवान् शङ्करले नाश गरिसक्नुभएको छ। हे यमदूत हो ! यद्यपि यसले प्रत्येक दिन अनेकौं पाप गरेको थियो। आज यो पापरहित भएको छ, त्यसको कारण सुन ॥९४-९६॥

---

३७. गर्हयन् यमदूतांस्ते, इति न.सं.पु.पाठः।
३८. विमष्यादौ, इति न.सं.पु.पाठः।
३९. भक्ताश्चैन नारकिणं द्विजम्, इति न.सं.पु.पाठः।
४०. गोघ्नं ब्रह्मणं स्त्रीघ्नं बालघ्नम्, इति न.सं.पु.पाठः।
४१. च क्रियां विभो, इति न.सं.पु.पाठः।
४२. भ्रष्टं याने स्वारोपितं शुभम्, इति न.सं.पु.पाठः।
४३. अत्रागताः शिवात्मानः, इति न.सं.पु.पाठः।
४४. दूरीकृताश्च तत्पापा ईश्वरेण, इति न.सं.पु.पाठः।
४५. अनेकबहुपापानि कृतं यद्यपि सर्वदा । निष्पापोऽसौ ह्यभवद्याम्याः शृणुध्वं तस्य हेतुकम्, इति न.सं.पु.पाठः।

कुशेश्वरमिदं लिङ्गं स्पृष्टमेतेन चैकदा। पाणिवक्षःशिरोभिस्तत् विना ज्ञानं हि पूयते[४६] ॥९७॥
अनेन धारितो मूर्ध्नि रुद्राक्षश्च निरन्तरम्। ललाटे हि विभूतिश्च धृताङ्गेऽनेन[४७] पश्यताम् ॥९८॥
आज्ञा दत्ता शिवेनाऽशु चैष लोके मम ध्रुवम्। भ्रष्टश्चाऽऽनीयताञ्चेति वयमत्रागता अतः ॥९९॥
इदानीं नीयतेऽस्माभिः शिवलोकमयं द्विजः। यूयं गच्छत याम्यं च मा दूयध्वं[४८] यथागताः ॥१००॥

स्कन्द उवाच

इत्युक्त्वा शिवदूतास्ते याम्येभ्यः खलु साम्प्रतम्। तमास्थाय विमाने तेऽचोदयन् यानवाहकान्[४९] ॥१०१॥
सूर्यायुतप्रतीकाशे किङ्किणीजालमण्डिते। गीतवाद्यरवोपेते भ्रष्टो याने विराजते ॥१०२॥
रुद्रकन्याकरोद्धूतैश्चामरैः स निषेवितः[५०]। गन्धर्वैः सेवकैर्भ्रष्ट उपहारैः प्रपूजितः ॥१०३॥
ततोऽगमद्विमानेन भ्रष्टश्चोद्धूतदुष्कृतः। सर्वलोकान्समालोक्य देवानां धाम शङ्करम्[५०क] ॥१०४॥
सर्वलोकोषितान् देवान् साधु साध्विति श्रावयन्[५१]। मुदा युक्तोऽगमच्चैवं द्वितीय इव शङ्करः ॥१०५॥
तत्र शिवपुरे दिव्ये सर्वसुखान्विते परे। युगकोटिसहस्राणि गणैर्भ्रष्टो[५२] महीयते ॥१०६॥
ततो भ्रष्टश्च मेदिन्यां जनितः स महीपतिः। जम्बूद्वीपे द्विजश्रेष्ठ सार्वभौमो ह्यभूदसौ ॥१०७॥
ततो भ्रष्टः स मेदिन्यां भुक्त्वा भोगान्यथेप्सितान्। देवराजस्त्वभूद् भूयस्त्यक्त्वा स्वं च कलेवरम् ॥१०८॥
हिमवति वरे शैले तपोर्ज्जितफलोत्तमे। इत्येतत् कथितं धीमन् विष्णुदासेन यत्कृतम् ॥१०९॥

---

हे बाबु हो ! यसले नजानीकन पनि दुई हात र शिरले अत्युत्तम कुशेश्वरको लिङ्गलाई स्पर्श गऱ्यो। त्यसैले यो पवित्र भएको छ। यसले निरन्तर शिरमा रुद्राक्ष र निधारमा विभूति (भस्म) धारण गरेको छ। त्यसको शरीरमा हेर। भगवान् शिवले शिवलोकमा मलाई भ्रष्ट भए पनि त्यस बाहुनलाई लिएर आओ भनेर आज्ञा दिनुभएको छ। यसैले यहाँ हामी आएका छौं। यस ब्राह्मणलाई अब हामीहरू शिवलोकमा लैजान्छौं। तिमीहरू जहाँबाट आएका थियौ, त्यही यमलोकमा जाओ, दुःख नमान ॥९७-९९॥

कार्तिक स्वामीले भन्नुभयो – यमदूतहरूलाई, इति भनेर ती शिवदूतहरूले विमानमा त्यस भ्रष्ट बाहुनलाई राखे अनि सारथिलाई यानका वाहनहरू चलाउन लगाए। असङ्ख्य सूर्यको किरणले देदीप्यमान, घण्टीका समूहले विभूषित तथा गीत र बाजाको शब्दले युक्त त्यस विमानमा भ्रष्ट बाहुन विराजमान भयो। त्यसलाई रुद्रकन्याहरूले हातले चमर हम्किएका थिए, त्यसका वरिपरि गन्धर्वहरू सेवक भएर बसेका थिए र विभिन्न सामग्रीहरूले त्यस भ्रष्टको पूजा भएको थियो। त्यसपछि सम्पूर्ण पाप नाश भएको त्यो भ्रष्ट बाहुन विमान बसेर देवताहरूको लोक हेर्दै शिवलोक गयो। सबै लोकमा बसेका देवताहरूलाई असल होस् असल होस् भन्दै आनन्दित भएर दोस्रो शङ्करजस्तै बनी त्यो शिवलोकमा गयो। सम्पूर्ण सुखले युक्त त्यस दिव्य शिवजीको पुरमा करोड हजार युगसम्म शिवका गणसित मिलेर त्यो भ्रष्ट ब्राह्मण ससम्मान बस्यो ॥१००-१०५॥

हे अगस्त्य मुनि ! त्यसपछि त्यो भ्रष्ट बाहुन पृथ्वीमा जन्मियो र जम्बूद्वीपको चक्रवर्ती राजा भयो। त्यसपछि त्यो भ्रष्ट बाहुन पृथ्वीमा इच्छा अनुसारको भोग भोगेर शरीरलाई त्यागी फेरि देवताको राजा अर्थात् इन्द्र हुन पुग्यो। हे बुद्धिमान् अगस्त्य ! उत्तम हिमालय पर्वतमा तपस्या गरेर कमाएको फललाई विष्णुदासनामक त्यस बाहुनले जसरी भोग गऱ्यो, त्यो सबै मैले तपाईंलाई बताएँ ॥१०६-१०९॥

---

४६. अनेन स्पर्शितं लिङ्गमेनं कुशेश्वरं परम्।
हस्ताभ्यां शिरसा वत्सा ऋते ज्ञानञ्च पूयते, इति न.सं.पु.पाठः।

४७. ललाटे हि विभूति तस्याङ्गे तद्धि, इति न.सं.पु.पाठः।

४८. दूयन्ताम्, इति न.सं.पु.पाठः।

४९. हि चोदयद्यानवाहनाम्, इति न.सं.पु.पाठः।

५०. निषेव्यते, इति न.सं.पु.पाठः।

५०क. शिवलोककम्, इति न.सं.पु.पाठः।

५१. वादयन्, इति न.सं.पु.पाठः।

५२. भ्रष्टो गणैः, इति न.सं.पु.पाठः।

भूयो वक्ष्ये विभूतीनां फलोत्तमं विशेषतः। भस्मस्नानयुतं विप्र जलस्नाननिवारणम् ॥११०॥
जलेन भस्मना स्नानमन्तरं बहु चान्तरम्। सर्वतीर्थमयं भस्म सर्वदेवमयः शिवः ॥१११॥
भस्मस्नायी च रुद्राक्षी स रुद्रो नात्र संशयः। भस्मस्नायी च रुद्राक्षी रुद्रजापी विशेषतः ॥११२॥
न पश्यति तथा याम्यं परं प्राप्नोति भावतः। सर्वतीर्थेषु यत्पुण्यं सर्वयज्ञेषु यत्फलम् ॥११३॥
तत्फलं लभते मन्त्री रुद्राक्षधारणात् किल। भस्मस्नानाच्च रुद्राक्षी शिवमन्त्रसमायुतः ॥११४॥
सर्वदानेषु यत्पुण्यं सर्वधर्मेषु यत्फलम्। भाले त्रिपुण्ड्रकं कृत्वा शिवध्यानसमाहितः ॥११५॥
रुद्राक्षान्धारयेद्धीमान् स्थाने स्थाने विचक्षणः। शिखायां केशवृन्दे च ग्रीवायां चैव हस्तयोः ॥११६॥
प्रकोष्ठे कूर्परे द्वे च मणिबन्धे तथापरे। वक्षसि कर्णयोर्द्धीमान् स रुद्रो नात्र संशयः ॥११७॥
अगम्यः सर्वभूतानां द्रष्टुं च हिंसितुं कुतः। ते वर्णितं भस्मविधारणस्य रुद्राक्षसंधारणतश्च यत्फलम् ॥
अत्यद्भुतं कुम्भज विप्र भूयः किमिच्छसि त्वं हि परं परन्तप ॥११८॥
ते वर्णितं भस्मविधारणस्य ह्यज्ञानतो यच्चरितं मया वै ॥
स्तोकं न मेरोश्च फलोत्तमानां श्रोतुं पुनर्वाञ्छसि किं द्विजाद्य ॥११९॥

अगस्त्य उवाच

रुद्राक्षाणां महत्पुण्यं भवतोक्तञ्च मे विभो। तुष्टोऽहं श्रवणात्तस्य विलक्षणं परन्तप ॥१२०॥
को देवः कीदृशं रूपं धारणाच्च फलं कति[५३]। कथं सन्तुष्टवान् रुद्रो रुद्राक्षेण वद प्रभो ॥१२१॥

---

अब म फेरि विशेष गरी विभूतिको उत्तम फलका बारेमा बताउँछु हे विप्र ! भस्मस्नान गरेपछि जलस्नान गर्नु पर्दैन। भस्मस्नान र जलस्नानमा ठूलो अन्तर छ, त्यो म बताउँछु भस्म सबै तीर्थमय हुन्छ, शिवजी सबै देवमय हुनुहुन्छ। भस्मले स्नान गर्ने र रुद्राक्षको माला धारण गर्ने मानिस साक्षात् रुद्र नै हुन्छ, यसमा शङ्का छैन। त्यसमा पनि भस्मले स्नान गर्ने र रुद्राक्ष धारण गर्ने व्यक्तिले विशेष गरेर यमलोक हेर्नै पर्दैन, त्यसले भगवान्‌को उत्तम भावलाई प्राप्त गर्छ। सम्पूर्ण तीर्थमा स्नान गर्नाले जुन फल पाइन्छ, सम्पूर्ण यज्ञ गर्नाले जुन फल उपलब्ध हुन्छ, शिवजीको मन्त्रको उच्चारण गर्दै भस्मस्नान र रुद्राक्ष धारण गर्ने व्यक्तिले ती सबै फल पाउँछ। सबैथरी दान गर्दा जुन पुण्य प्राप्त हुन्छ र सबै किसिमको धर्म गर्दा जुन फल पाइन्छ, मन्त्रपूर्वक रुद्राक्ष धारण गर्नाले त्यो फल पाइन्छ ॥१०९-११४॥

निधारमा त्रिपुण्ड्र लगाएर एकचित्त भई शिवजीको ध्यानमा तत्पर भएको व्यक्ति र शिखा, केशसमूह, घाँटी, दुई हात, प्रकोष्ठ, दुई जोर्नी, मणिबन्ध, काँध, वक्षस्थल र दुई कानमा रुद्राक्ष धारण गर्ने बुद्धिमान् व्यक्ति रुद्र नै हुन्छ, यसमा सन्देह छैन। त्यो सबै प्राणीहरूका निमित्त अगम्य हुन्छ। त्यसलाई देख्न र मार्न त कसरी सकिन्छ र ? अर्थात् त्यो अदृश्य तथा अवध्य नै हुन्छ ॥११५-११७½॥

हे अगस्त्य मुनि ! मैले तिमीलाई भस्मधारण र रुद्राक्षधारण गर्नाले जुन फल प्राप्त हुन्छ, त्यस्तो अद्‌भुत घटना बताएँ। हे विप्र ! हे परन्तप ! यसपछि तिमी के सुन्न चाहन्छौ ? । तिमीलाई भस्मधारणको माहात्म्य बताउन मैले मूर्ख ब्राह्मणको जुन चरित्र बताएँ, त्यो सुमेरु पर्वतमा पाइने उत्तम फलभन्दा थोरै छैन। हे विप्र ! अब तिमी के सुन्न चाहन्छौ ? ॥११८-११९॥

अगस्त्य मुनिले भने – हे परन्तप ! तपाईंले अत्यन्त अद्‌भुत पुण्यदायक रुद्राक्षको माहात्म्य बताउनुभयो। त्यसलाई सुनेर म अत्यन्त प्रसन्न भएँ। रुद्राक्षको देवता को हो ? कस्तो रूप छ ? रुद्राक्ष धारण गर्नाले के कति फल मिल्छ ? रुद्राक्ष धारण गर्नाले भगवान् रुद्र कसरी सन्तुष्ट हुनुहुन्छ ? बताउनुहोस् ॥१२०-१२१॥

---

५३. कति फलञ्च धारणात्, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

यदुक्तं मे पुरागस्त्य शङ्करेण हिमाचले[५४] । रुद्राक्षाणां फलं चैव रूपं तेषां यथाविधि ॥१२२॥
मन्मूर्त्तयो हि रुद्राक्षाश्चतुर्वर्गफलप्रदाः । यदुक्तमेव रुद्रेण तत्सर्वं वच्मि ते शृणु ॥१२३॥
पादपानाञ्च सर्वेषां नमेरुरुत्तमो भवेत् । तत्फलानि च जानीहि रुद्राक्षान् रुद्रविग्रहान् ॥१२४॥
संसारपादपेशानः संफलति च भूरसान् । लोकोद्धारणहेतूंस्तान् जानीहि[५५] तन्मयं जगत् ॥१२५॥
देवादयो नराः सर्वे धारणाद्रुद्रविग्रहाः । यं यमिच्छन्ति तेऽगस्त्य प्राप्नुवन्ति न संशयः ॥१२६॥
रुद्राक्षं मोक्षदं विद्धि श्रीसाधनं च कामदम् । पापस्य दाहकं तञ्च[५६] दुःखदारिद्र्यघातकम् ॥१२७॥
हस्ते प्रमाणबन्धेन रुद्राक्षान्मोक्षमाप्नुयात् । भुक्तिमुक्तिप्रदं साक्षात्स रुद्रो नात्र संशयः ॥१२८॥
लभते शिरसि प्राज्ञो धृत्वा कोटिगुणं फलम्[५७] ॥१२९॥
कर्णयोर्दशकोटिः स्यात्कण्ठे कोटिसहस्रशः । अनन्तं स्याच्छिखायाञ्च तथैव बाहुमूलयोः ॥१३०॥
वक्षसि दशलक्षं स्यादङ्गेषु धारणात्फलम् । जपध्यानविहीनोऽपि रुद्राक्षं धारयन्द्विजः ॥१३१॥
देवानामसुराणाञ्च वन्दनीयो यथेश्वरः । सर्वपापैर्विनिर्मुक्तः स याति परमां गतिम् ॥१३२॥
अन्यासु चैव मालासु जपाद्दशगुणं फलम्[५८] । करस्थचालनाच्चैव सहस्रं मनुपूर्वकम्[५९] ॥१३३॥
त्रिशून्यं मनुजप्तेन सहस्रेणैव लक्षकम् । लक्षजप्तेन कोटिः स्यात्कोटिजप्तेन सर्वदृक् ॥१३४॥

---

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! अघि हिमालयमा शङ्करले मलाई जसरी रुद्राक्षको फल, स्वरूप बताउँदै रुद्राक्ष भनेको मेरै मूर्ति हुन्, यिनीहरूले चारै वर्ग (धर्म, अर्थ, काम र मोक्ष) को फल दिन्छन् भनेर भन्नुभएको थियो, त्यो सबै म तपाईंलाई बताउँछु, सुन्नुहोस् ॥१२२-१२३॥

संसारका सबै रुखहरूमा रुद्राक्षको वृक्ष सर्वोत्तम हुन्छ । त्यसका फल रुद्राक्षहरू रुद्रका शरीररूप नै हुन् । संसारका वृक्षमा श्रेष्ठ मानिने रुद्रक्षका वृक्ष पृथ्वीमा नै फलेका छन् । ती रुद्राक्षलाई पृथ्वीको रसरूप भएर संसारको उद्धारका कारण भएका छन् भन्ने ठान र जगत् पनि रुद्राक्षमय छ भन्ने बुझ । हे अगस्त्य मुनि ! देवतालगायत सबै मनुष्यहरू रुद्राक्ष धारण गर्नाले रुद्रशरीरका हुन्छन् । तिनीहरू जे इच्छा गर्दछन्, त्यो पाउँछन्, यसमा संशय छैन । रुद्राक्षले मोक्ष दिन्छ, सम्पत्ति दिन्छ र इच्छा लागेको फल दिन्छ भन्ने कुरा जान्नुहोस् । रुद्राक्षले पापलाई डढाइदिन्छ र दुःख एवं दारिद्र्यको नाश गर्दछ ॥१२४-१२७॥

प्रमाण अनुसार हातमा बाँध्नाले रुद्राक्षबाट मानिसले मोक्ष प्राप्त गर्दछ । रुद्राक्ष साक्षात् रुद्र नै हो । यसले भुक्ति तथा मुक्ति दुबै दिन्छ, यसमा सन्देह छैन । कानमा धारण गर्नाले दश करोड, कण्ठमा धारण गर्नाले हजार करोड, शिखा र पाखुरामा धारण गर्नाले अनन्त फल प्राप्त हुन्छ । मानिसले छातीमा दशलाख रुद्राक्ष धारण गर्नुपर्दछ । यसरी मैले तपाईंलाई शरीरका अङ्गहरूमा रुद्राक्ष धारण गर्दा प्राप्त हुने फलको विषयमा बताएँ । जप र ध्यान नगर्ने मानिसले पनि रुद्राक्ष धारण गरेको छ भने ईश्वर जस्तै देवता र असुरहरूको पनि वन्दनीय हुन्छ । त्यो सबै पापबाट मुक्त भएर उत्तम गतिमा प्राप्त हुन्छ ॥१२८-१३२॥

जपध्यान गर्ने मानिसले अरू मालाले जप गर्दा दश गुणा फल पाउँछ भने मन्त्रसहित हात चलाएर जप गर्दा हजार गुणा फल प्राप्त गर्छ । रुद्राक्षमाला प्रयोग गर्दै सत्त्व, रज र तमोगुणरूप तीनै किसिमका भावले शून्य भएर एक हजार मन्त्र जप्यो भने एकलाख मन्त्र जपेको फल पाउँछ, लाख पटक जप्यो भने करोड जपेको र करोड पटक जप्यो भने सर्वज्ञ बन्दछ ॥१३३-१३४॥

---

५४. शङ्करेणाचले हिमे, इति न.सं.पु.पाठः । ५५. तथैव, इति न.सं.पु.पाठः ।
५६. रुद्राक्षं पापदाहञ्च, इति न.सं.पु.पाठः । ५७. शिरसा धारणाद् धीमान् कोटिगुणं फलं लभेत्, इति न.सं.पु.पाठः ।
५८. अन्यासाञ्चैव मालानां दशगुणाञ्जपाल्लभेत्, इति न.सं.पु.पाठः । ५९. मनुसंयुतान्, इति न.सं.पु.पाठः ।

कोटिकोटिगुणं पुण्यं रुद्राक्षमालया ततः। वाचिकेन तथा चैवमुपांशुना पुनर्द्विज ॥१३५॥
चेतसा च महाप्राज्ञ कोटिकोटिगुणं लभेत् ॥१३६॥
ध्यानयोगेन चित्तेन ह्यनन्तं फलमाप्नुयात्। वक्त्राणाञ्च फलं वच्मि रुद्राक्षाणां पृथक् पृथक् ॥१३७॥
एकवक्त्रः शिवः साक्षाद् ब्रह्महत्यां व्यपोहति। द्विवक्त्रो देवदेवोऽसौ गोहत्यां नाशयेद् ध्रुवम् ॥१३८॥
त्रिवक्त्रश्चाग्निरूपः स्यात्स्त्रीहत्यां हरति क्षणात्। चतुर्वक्त्रः स्वयं ब्रह्मा नरहत्यां व्यपोहति ॥१३९॥
पञ्चवक्त्रस्तथा रुद्रः कालाग्निर्नाम भीषणः। पञ्चवक्त्रस्य माहात्म्यं मुने शृणु[६०] समाहितः ॥१४०॥
अगम्यागमनाच्चैव चाभक्ष्यभक्षणात्तथा। अदृश्यदर्शनाच्चैव चावाच्यभाषणात्ततः।
मुच्यते सर्वपापेभ्यः पञ्चवक्त्रस्य धारणात् ॥१४१॥
षड्वक्त्रो मम मूर्तिः स्यात् धारणात्सर्वदा मुने। दक्षिणे हस्तमूले च सर्वपापैः प्रमुच्यते ॥१४२॥
सङ्ग्रामे जयमाप्नोति मुच्यते पातकैर्भयैः। षड्वक्त्रस्य करे[६१] कण्ठे धारणाच्च फलं शृणु ॥१४३॥
अवध्यः सर्वभूतानां रुद्रवद्विचरेद् भुवि। सप्तवक्त्रश्च रुद्राक्षो ह्यनन्तो नाम नागराट् ॥१४४॥
तद्धारणेन सद्भाग्यः सुवर्णाढ्यः सुखी भवेत्। रिपुनाशो भवेद् तस्य रोगी बली गतज्वरः[६२] ॥१४५॥
रुद्राक्षोऽष्टाननो देवः शूलपाणिश्च नामतः। तस्याष्टमस्य माहात्म्यमवधारय कुम्भज ॥१४६॥
जीवेद्वर्षशतं साग्रं धारणात् तस्य मानवः[६३]।

---

हे महाप्राज्ञ ! जुन ब्राह्मण रुद्राक्षमाला लिएर वाचिक, उपांशु र मानसिक विधिले चित्त लगाई जप गर्छ, त्यसले कोटिकोटि गुना फल पाउँछ। ध्यानमा चित्त लगाई रुद्राक्षमाला लिएर जप गर्नाले अनन्त फल पाउँछ। रुद्राक्षका मुखको संख्यानुसार पृथक् पृथक् फल हुन्छ, त्यो म बताउँछु। एकमुखे रुद्राक्ष साक्षात् शिव नै हुन्छ, यसले ब्रह्महत्यालाई नाश गर्छ। दुईमुखे रुद्राक्ष विष्णु हुन्छ, यसले गोहत्याको पापलाई पनि नाश गर्छ। तीनमुखे रुद्राक्ष अग्निस्वरूप हुन्छ, यसले स्त्रीहत्याको पापलाई तुरुन्तै नाश गर्दछ। चारमुखे रुद्राक्ष ब्रह्मस्वरूप हुन्छ, त्यसले नरहत्याको पापलाई नाश गर्दछ ॥१३५-१३९॥

त्यसै गरी पाँचमुखे रुद्राक्ष भीषण कालाग्नि नामक रुद्रस्वरूप हुन्छ। हे अगस्त्य मुनि ! एकचित्त भएर पाँचमुखे रुद्राक्षको माहात्म्य सुन्नुहोस्। पञ्चवक्त्र रुद्राक्ष धारण गर्नाले मानिस अगम्यामा गरेको गमन, अभक्ष्यको भक्षण, अदृश्यको दर्शन, अवाच्य भाषणबाट पैदा हुने अरू सबै किसिमका पापबाट मुक्त हुन्छ। छमुखे रुद्राक्ष मेरै अर्थात् म कुमारकै मूर्ति हो। हे मुनि ! सधैँ दाहिने हातको कुहिना नजिकै धारण गर्नाले सबै पापबाट मुक्त हुन्छ। त्यसले सङ्ग्राममा विजय प्राप्त गर्छ। पाप र भयबाट मुक्त हुन्छ। छमुखे रुद्राक्ष दुई हात र घाँटीमा लगाउनाले कस्तो फल प्राप्त हुन्छ, त्यो सुन्नुहोस्। छमुखे रुद्राक्ष धारण गर्ने व्यक्ति सबै प्राणीको अवध्य हुन्छ। रुद्रजस्तै भएर पृथ्वीमा विचरण गर्दछ। सातमुखे रुद्राक्ष अनन्त नामक नागराजको स्वरूप हो। त्यसलाई धारण गर्नाले मानिस सौभाग्यशाली, सुवर्णयुक्त र सुखी हुन्छ। साथै त्यसका सम्पूर्ण शत्रुहरू नाश भएर जान्छन् र त्यो निरोगी, बलियो र सन्तापरहित हुन्छ ॥१४४-१४५॥

आठमुखे रुद्राक्ष भगवान् शूलपाणि अर्थात् स्वयं भगवान् रुद्रकै स्वरूपको भएकाले त्यसलाई उहाँकै नामबाट पनि शूलपाणि नै भनिन्छ। हे अगस्त्य मुनि ! त्यस्तो आठमुखे रुद्राक्षको माहात्म्य सावधानीपूर्वक सुन्नुहोस्। आठमुखे रुद्राक्ष धारण गर्ने मानिस पूर्ण शतायु अर्थात् सय वर्ष बाँच्ने हुन्छ ॥१४६½॥

---

६०. शृणु मुने, इति न.सं.पु.पाठः।
६१. षड्वक्त्रः करयोः, इति न.सं.पु.पाठः।
६२. रिपुनाशस्तथाऽरोगी बलवान्विगतज्वरः, इति न.सं.पु.पाठः।
६३. धारणाच्च स्वयम्, इति न.सं.पु.पाठः।

नववक्त्रश्च रुद्राक्षो देवोऽसौ भैरवो मुने ॥१४७॥
धारयेद्वामहस्तेन चातुलो[६४] बलवान्भवेत्। नवग्रहैस्तथा भूतैः पिशाचैर्डाकिनीगणैः ॥१४८॥
अन्यैश्च विविधैर्देवैर्न बाध्यते कदापि च। लक्षकोटिसहस्राणि पञ्चहत्यां करोति यः ॥१४९॥
विनश्यति हि तत्सर्वं नववक्त्रस्य धारणात्। रुद्राक्षो दशवक्त्रोऽसौ स्वयं देवो जनार्दनः ॥१५०॥
तद्धारणान्महाप्राज्ञ वक्ष्यामि तत्फलं शृणु। ग्रहाः सर्वे पिशाचाश्च वेताला ब्रह्मराक्षसाः ॥१५१॥
पन्नगाश्च विनश्यन्ति दशवक्त्रस्य धारणात्। एकादशास्यो रुद्राक्षो ह्यंशैरेकादशैर्मुने ॥१५२॥
ईश्वरस्य समायुक्तो शम्भुर्नाम महाविभुः। शिखायां धारयेन्नित्यं तस्य पुण्यफलं शृणु ॥१५३॥
अश्वमेधसहस्राणि वाजपेयशतानि च। तत्फलं लभते नित्यं तद्रुद्राक्षस्य धारणात् ॥१५४॥
द्वादशास्यश्च रुद्राक्षः सूर्य्यो नाम महाद्युतिः। संयुक्तो द्वादशैरंशैरादित्यस्य घटोद्भव ॥१५५॥
तद्धारणान्महातेजा भवेच्चैव निरन्तरम्। केशान्ते धारणान्नित्यं सूर्यतुल्यो न संशयः ॥१५६॥
न पीड्यते महाघोरैरादित्यादिनवग्रहैः। गोमेधस्य व्रतानाञ्च यत्फलं परिकीर्तितम् ॥१५७॥
यत्फलमुपवासानां तत्फलं लभते ध्रुवम्। पीडाभिर्मुच्यते रोगी सौभाग्यं याति दुर्भगः ॥१५८॥
त्रयोदशास्यो रुद्राक्षः कामदेवो हि नामतः। कण्ठे च धार्यते येन स रुद्रो नात्र संशयः ॥१५९॥
द्वितीयः कामदेवोऽसौ स्त्रीणां संक्षोभको भवेत्। सर्वकाममवाप्नोति सर्वसौभाग्यसम्पदम् ॥१६०॥

---

नौमुखे रुद्राक्ष लगाउने व्यक्ति भैरवस्वरूप नै हुन्छ। यो रुद्राक्ष बायाँ हातमा धारण गर्नाले मानिस अत्यन्त बलवान् हुन्छ। नवग्रह, भूत, पिशाच, डाकिनीगण तथा अरू अनेक प्रकारका देवताहरूले नौमुखे रुद्राक्ष धारण गर्ने मानिसलाई कहिल्यै पनि बाधा दिन सक्दैनन्। जो लाख, करोड र सहस्र ब्रह्महत्या गर्दछ नौमुखे रुद्राक्ष धारण गर्नाले त्यसका सबै पाप नष्ट हुन्छन् ॥१४७-१४९॥

दशमुखे रुद्राक्षलाई स्वयं जनार्दन भगवान् मानिएको छ। हे महाप्राज्ञ ! त्यसलाई धारण गर्नाले के हुन्छ ? त्यसको फल भन्दछु, सुन्नुहोस्। दशमुखे रुद्राक्ष धारण गर्नाले सबै ग्रह, पिशाच, बेताल, ब्रह्मराक्षस तथा सर्पहरू पनि नाशमा प्राप्त हुन्छन् ॥१५०-१५१॥

हे मुनि ! एघारमुखे रुद्राक्ष एकादश अंशले युक्त सर्वेश्वर महाप्रभु शम्भुको स्वरूप हो। त्यसलाई सधैँ शिखामा धारण गर्नाले के फल पाइन्छ ? त्यसको फल सुन्नुहोस्। त्यस एघारमुखे रुद्राक्षलाई धारण गर्ने मानिसले हजारौँ अश्वमेध यज्ञ र सयकडौँ वाजपेय यज्ञ गरेको फल पाउँछ ॥१५२-१५४॥

बाह्रमुखे रुद्राक्ष महान प्रभा भएका सूर्य देवताको स्वरूप हो। हे अगस्त्य मुनि ! यो रुद्राक्ष बाह्र अंशले युक्त भएको सूर्य हो। त्यस रुद्राक्षलाई सधैँ धारण गर्नाले मानिस महातेजस्वी हुन्छ। त्यसलाई नित्य शिखामा धारण गर्नाले सूर्यतुल्य हुन्छ, यसमा सन्देह छैन। बाह्रमुखे रुद्राक्षलाई नित्य शिखामा धारण गर्नाले कष्टदायक आदित्य आदि नवग्रहले पीडा दिँदैनन्। त्यसको फल गोमेध व्रत गरेको फलसमान हुन्छ। अनेकथरी उपवास बस्नाले जुन फल प्राप्त हुन्छ बाह्रमुखे रुद्राक्ष धारण गर्नाले त्यही फल प्राप्त हुन्छ। रोगी पीडाबाट मुक्त हुन्छ र दरिद्र व्यक्ति सम्पत्तिशाली बन्दछ ॥१५५-१५८॥

तेह्रमुखे रुद्राक्ष कामदेवको स्वरूप हो, यसलाई जसले घाँटीमा धारण गर्दछ, त्यो रुद्र नै हुन्छ, यसमा सन्देह छैन। यो दोस्रो कामदेव नै हो, यसले स्त्री जातिको मनलाई क्षुब्ध गराउँछ। यसलाई धारण गर्ने मानिसले सम्पूर्ण इच्छा, सौभाग्य र सम्पत्ति पाउँछ। यस्तो रुद्राक्षको धरण गर्नाले भाग्य नभएको व्यक्तिले पनि सबै कार्य पूर्ण गर्न सक्छ र सिद्धि पाउँछ ॥१५९-१६०½॥

---

६४. अतुलम्, इति न.सं.पु.पाठः।

सर्वकार्येषु सिद्धिं च भाग्यहीनोऽपि प्राप्नुयात्[६५]। चतुर्दशास्यो रुद्राक्षः परं ब्रह्म सनातनम् ॥१६१॥
धारयेत्सततं मूर्ध्नि सर्वतेजोमयं विभुम्। मूर्तिश्चतुर्दशानाञ्च भुवनानाञ्च संशयः ॥१६२॥
तस्माच्चतुर्दशं वक्त्रं सर्वेषामुत्तमं स्मृतम्। धार्यते यैश्च रुद्राक्षो चतुर्दशाननस्तथा ॥१६३॥
मूर्ध्नि तेन धृतं सर्वं भुवनानां चतुर्दश। यावत्यो मूर्त्तयः सर्वास्तिष्ठन्ति भुवनेषु च ॥१६४॥
स्थावराणां जीवितानां तावत्यो[६६] रुद्रमूर्त्तयः। तावत्यो मूर्त्तयः सर्वास्तिष्ठन्ति भुवनेषु च ॥१६५॥
तद्रुद्राक्षो धृतो येन तेनाहं विधृतो मुने[६७]। येन धृतो सदा मूर्ध्नि चतुर्दशाननो विभुः ॥१६६॥
प्रवक्ष्यामि च ते स्नेहात्तस्य पुण्यफलं शृणु। सर्वसिद्धिश्च तद्धस्ते तिष्ठति च निरन्तरम् ॥१६७॥
महत्कष्टेन लभ्यः स[६८] सिद्धो भवेत्तथापरः। सर्वपापहरो नित्यं महत्पुण्यञ्च लभ्यते ॥१६८॥
तद्रुद्राक्षो धृतो येन पातकैश्च न लिप्यते। मेदिन्यां यानि दत्तानि महादानानि सर्वशः ॥१६९॥
प्राप्नोति तत्फलं मर्त्यस्तद्रुद्राक्षस्य धारणात्। सर्वतीर्थेषु यत्पुण्यं सर्वयज्ञेषु यत्फलम् ॥१७०॥
पूजोपवासधर्मेषु तत्फलं लभतेऽनिशम्। देववन्मानुषो भूत्वा भुनक्ति सकलं सुखम् ॥१७१॥
सर्वकामाँश्चिरं भुक्त्वा गच्छति परमं पदम्। पञ्चदशाननादीनां रुद्राक्षाणाञ्च धारणात् ॥१७२॥
साधारणफलं ज्ञेयं मालोद्भवं यथोरसि। इत्येतत्कथितं ते वै यदुक्तं गिरिशेन मे ॥१७३॥
रुद्राक्षाणां फलान्यार्य संसारतारणानि च ॥१७४॥

देवाश्च पूर्वं हिमवद् गिरौ हि तपः प्रचक्रुः सुकठोरपुण्यम्।
रुद्राक्षभस्मानि विधाय काये प्रापुश्च दिक्पालवरान्महेशात् ॥१७५॥

इति श्रीस्कन्दपुराणे हिमवतखण्डे विभूतिरुद्राक्षमाहात्म्यं नामैकादशोऽध्यायः ॥११॥

---

चौधमुखे रुद्राक्ष साक्षात् सनातन परब्रह्मस्वरूप हो। सर्वतेजोमय परब्रह्मलाई सधैँ शिरमा धारण गर्नाले व्यक्ति चौध भुवनकै स्वरूप हुन्छ, यसमा कुनै सन्देह छैन त्यसकारण चौधमुखे रुद्राक्ष सम्पूर्ण रुद्राक्षमा उत्तम मानिएको छ। जसले चौधमुखे रुद्राक्ष शिरमा धारण गर्छ, त्यसले चौधै भुवनलाई शिरमा धारण गरेको मानिन्छ। पाताल र स्वर्ग आदिमा जति पनि स्थावर र जीवित प्राणीका मूर्तिहरू छन्, ती सबै मूर्तिहरू रुद्रमूर्ति नै हुन्। ती सबै चौधै भुवनमा रहेका छन् ॥१६१-१६५॥

हे मुनि ! जसले सधैँ शिरमा चौधमुखे रुद्राक्षरूप परब्रह्मलाई धारण गर्छ, त्यसले मलाई नै धारण गरेको हुन्छ। तपाईंको स्नेहले म त्यसको फल बताउँछु, सुन्नुहोस्। जसले चौधमुखे रुद्राक्ष धारण गर्छ, त्यसको हातमा निरन्तर सबै सिद्धिहरू रहन्छन्। ठूलो कष्टले त्यसलाई प्राप्त गर्न सकिन्छ। त्यो प्राप्त भएपछि मानिस सिद्ध नै हुन्छ। त्यसले सबै पापलाई नाश गर्छ र ठूलो पुण्य प्रदान गर्छ। जसले चौधमुखे रुद्राक्ष धारण गरेको हुन्छ, त्यो कुनै पापबाट मुछिँदैन। पृथ्वीमा जति पनि महादानहरू दिइन्छन्, रुद्राक्ष धारण गर्ने मानिसले ती दानको सबै फल प्राप्त गर्दछ। सबै तीर्थबाट जुन पुण्य उपलब्ध हुन्छ, सबै यज्ञबाट जुन फल प्राप्त हुन्छ रुद्राक्ष धारण गर्नाले मानिसले देवताजस्तै बनेर ती सबै फल पाउँछ। त्यस्तो मानिसले पृथिवीमा रहँदासम्म आफ्ना सबै चाहना पूरा गरी अन्त्यमा परमपद पाउँछ ॥१६६-१७१½॥

पन्ध्रमुखेदेखि माथिका सबैखाले रुद्राक्ष धारण गर्ने मानिसहरूले जसरी कुनै माला छातीमा लगाउँदा फल पाउँछन् त्यसै गरी साधारण फल प्राप्त गर्छन्। हे आर्य ! संसारसागरबाट पार गराउने फल प्रदान गर्ने रुद्राक्षको जुन महिमा मलाई स्वयं भगवान् शिवले मलाई बताउनुभएको थियो त्यही रहस्य मैलै आज तपाईंलाई बताएँ। हिमालयपर्वतमा पहिले देवताहरूले शरीरमा भस्म र रुद्राक्षमाला धारण गरी अत्यन्त कठोर तथा पवित्र तपस्या गरेका थिए। तिनीहरू महादेवबाट वर पाएर दिक्पाल बन्न पुगे ॥१७२-१७५॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गत हिमवतखण्डमा भस्म एवं रुद्राक्षको माहात्म्यवर्णन नामक एघारौं अध्याय पूर्ण भयो।

---

६५. संलभेत्, इति न.सं.पु.पाठः।
६६. स्थावरं जीवितानां स्यात्तावत्यो, इति न.सं.पु.पाठः।
६७. तेन धृतो हि मां मुने, इति न.सं.पु.पाठः।
६८. तल्लभ्यम्, इति न.सं.पु.पाठः।

# द्वादशोऽध्यायः

पूर्वदिशो दिक्पालत्वेनेन्द्रस्याभिषेकः

अगस्त्य उवाच

देवदेवात्मज स्कन्द त्वत्प्रसादाच्छ्रुतं मया। अनुष्ठानं द्विजातीनां भूतिरुद्राक्षयोस्तथा ॥१॥
इदानीं श्रोतुमिच्छामि त्वत्तो ब्रह्मविदांवरात्। हिमवतो महाद्रेश्च शृङ्गेषु सुमहत्सु च ॥२॥
के गीर्वाणास्तपश्चक्रुर्वद मे लोकशङ्कर। नामधेयं च शृङ्गानां तीर्थानाञ्च विशेषणम् ॥३॥
येषु स्नात्वा फलान्याशु लब्धवन्तः सुरोत्तमाः। तेषां नामानि[1] तीर्थानां वद मे देव सर्वशः ॥४॥

स्कन्द उवाच

आसीत्पूर्वं महातेजाः कश्यपो नाम सत्यवाक्। देवासुरमनुष्याणां त्रिविधानां पितामहः ॥५॥
सत्यवादी सदा दान्तो मेधावी सुविचक्षणः। समदृष्टिश्च भूतेषु सर्वशास्त्रेषु पारगः ॥६॥
शिवार्चने रतो नित्यं शिवमन्त्रपरायणः। निर्विकारः सदानन्दः शिवध्याने च तत्परः ॥७॥
उक्तेष्वङ्गेषु रुद्राक्षान् दधानो भूतिलेपनम्। नित्यं देहेषु भालेषु त्रिपुण्ड्रकं दधार वै ॥८॥
तस्याऽऽत्मजो महातेजाः शक्रो नाम घटोद्भव। तीक्ष्णबुद्धिर्महाप्राज्ञः सर्वशास्त्रविशारदः ॥९॥
एकस्मिन् समये[2] महत्क्षेत्रे सर्वतीर्थोत्तमोत्तमे। गङ्गायामुनयोर्मध्ये पावने लोकपावने ॥१०॥
अश्वमेधशतं शक्रः साङ्गं पूर्णञ्चकार वै। वेदवेदाङ्गतत्त्वज्ञैर्ऋषिभिः सपुरोहितैः ॥११॥
यज्ञाङ्गैर्विविधैः सार्द्धं हव्यकव्यैश्च पूजनैः। विप्रान् सम्भोजयन्नित्यं स हैमां दक्षिणां ददौ [२क] ॥१२॥

---

अध्याय- १२
पूर्वदिशाको दिक्पालका रूपमा इन्द्रको अभिषेक

अगस्त्य मुनिले भन्नुभयो - हे शिवपुत्र कार्तिक स्वामी ! द्विजातिहरूले गर्नुपर्ने कृत्य, विभूति तथा रुद्राक्ष धारणका सम्बन्धमा तपाईंको अनुग्रहले गर्दा मैले सुन्ने अवसर पाएँ। म अहिले ब्रह्मज्ञानीहरूमा श्रेष्ठ हजुरबाट हिमालयपर्वतका ठूला शिखरहरूमा कुन-कुन देवताहरूले तपस्या गरे ? ती देवताहरू को को हुन् ? शिखरका नामहरू के-के हुन् ? तिनीहरूको विशेषताका बारेमा जान्न चाहन्छु, बताउनुहोस्। हे भगवन् ! जुन तीर्थमा देवताहरूले स्नान गरेर तुरुन्त विभिन्न फलहरू प्राप्त गरे, ती तीर्थहरूको महिमा पनि मलाई बताउनुहोस् ॥१-४॥

कार्तिक स्वामीले भन्नुभयो - अघि महातेजस्वी, सत्यवादी देवता, दैत्य र मनुष्य गरी तीनै वर्गका पितामह कश्यप ऋषि थिए। उनी सत्य बोल्थे, संयमी र उदार थिए, बुद्धिमान् थिए। उनी अत्यन्त चतुर र सबै प्राणीमा समान दृष्टि राख्दथे। सम्पूर्ण शास्त्रमा पारङ्गत उनी सधैँ शिवजीको पूजामा संलग्न थिए, शिवमन्त्र सधैँ जप्थे, विकारदेखि मुक्त थिए, सधैँ आत्मानन्दमा रमाउँथे अनि नित्य निरन्तर शिवको ध्यानमा संलग्न हुन्थे। उनी शरीरका अङ्गहरूमा रुद्राक्ष धारण गर्थे र सधैँ निधारमा त्रिपुण्ड्र र शरीरका अङ्गहरूमा विभूति लगाउँथे ॥५-८॥

हे अगस्त्य मुनि ! कश्यपका इन्द्रनामक महातेजस्वी पुत्र पैदा भए। तिनी तीक्ष्ण बुद्धि भएका ठूला विद्वान् र समस्त शास्त्रका ज्ञाता थिए। केही समयपछि सबै तीर्थमा उत्तम गङ्गा र यमुनाको बीचमा पर्ने, समस्त जनतालाई पवित्र तुल्याउने विशाल क्षेत्रमा इन्द्रले सबै अङ्ग पुग्ने गरी वेद-वेदाङ्गतत्त्व जान्ने ऋषिहरू र पुरोहितद्वारा अश्वमेध यज्ञ गराए। यज्ञको अङ्गभूत हव्य, कव्य, पूजन आदिद्वारा ब्राह्मणहरूलाई नित्य भोजन गराई तिनले सुवर्णमय दक्षिणा दिए ॥९-१२॥

---

१. नाम च, इति न.सं.पु.पाठः।
२. कश्चित्काले, इति न.सं.पु.पाठः।
२क. ददौ हैमान् सदक्षिणान्, इति न.सं.पु.पाठः।

सन्तुष्टाश्च ततो विप्रा देवाश्चैव तथाविधाः। ततो यज्ञावसाने वै चाऽभिषेकं[३] ददुः सुराः ॥१३॥
तस्मै महात्मने सिद्धा होतार ऋषयस्तदा। राजत्वममरावत्या ददुः शक्राय सादरम्[४] ॥१४॥

देवा ऊचुः

अद्यप्रभृति चाऽस्माकं राजा त्वं भव हे[५] प्रभो। नाके हर्त्ता च कर्त्ता च दाता त्वं रक्षको हि नः ॥१५॥
हन्ता शास्ता च शत्रूणां नः पोषकोऽनिशं प्रभुः।

शक्र उवाच

अनुग्रहः कृतो मह्यं भवद्भिश्च सुरोत्तमैः ॥१६॥
ऋषिभिश्च तथा मान्यान्युष्मानद्य प्रपूजये।

स्कन्द उवाच

ततः शक्रो मुनीन्देनानानर्च विविधार्हणैः ॥१७॥
स्तवैर्बहुविधैर्विप्रानतिथींश्च प्रदक्षिणैः। बृहस्पतिस्तदा प्राज्ञो जगाद[६] तान् प्रति ध्रुवम् ॥१८॥
आदाय विधिवत्पूजां सभामध्ये सुशोभितः[७]।

बृहस्पतिरुवाच

भो भो देवाः शृणुध्वं मे वचनं तथ्यभाषणम् ॥१९॥
न स्थातव्यं चिरं चात्र त्यक्त्वा स्वर्गं दिवौकसः। अस्मिँल्लोकेऽमराः शश्वत् बहवः सन्त्युपद्रवाः ॥२०॥
स्वर्गस्थानेप्सया लोकोऽवश्यं चोपद्रविष्यति।

देवल उवाच

अहो ऋतं गुरोर्वाक्यं सत्त्वानाञ्च हितोदितम् ॥२१॥
यदुक्तं गुरुणा तथ्यं युष्माकञ्च विशेषतः। गच्छत त्रिदशा यूयमत्याज्यं त्रिदिवं किल[८] ॥२२॥
तद्वाक्यं न भवेन्मिथ्या अपि तद्धेलयोदितम्।

---

यज्ञमा आएका देवता र ब्राह्मणहरू सबै सन्तुष्ट भए र यज्ञको अन्त्यमा ती ब्राह्मण र देवताहरूले इन्द्रलाई अभिषेक गरे। सिद्ध, होता र ऋषिहरूले अभिषेकपछि ती महात्मा इन्द्रलाई सादर अमरावतीको राजा बनाए ॥१३-१४॥

देवताहरूले भने – हे प्रभो ! आजदेखि तपाईं हाम्रो राजा हुनुहोस्। स्वर्गका हर्ताकर्ता र पालनकर्ता तपाईं नै हुनुहुन्छ, तपाईं नै दाता हुनुहुन्छ र तपाईं नै हाम्रा रक्षक हुनुहुन्छ। शत्रुहरूलाई मार्ने, शासन गर्ने र नित्य हाम्रो पालन गर्ने हजुर नै हुनुहुन्छ ॥१५½॥

इन्द्रले भने – हे ब्राह्मण तथा देवताहरू ! हजुरहरूले ममाथि ठूलो अनुग्रह गर्नुभयो, यहाँहरू सबै मान्य हुनुहुन्छ, म हजुरहरूको पूजा गर्छु ॥१६॥

कार्तिक स्वामीले भन्नुभयो – त्यसपछि इन्द्रले अनेक प्रकारका पूजाका सामग्री, स्तुति र प्रदक्षिणाद्वारा ऋषि, देवता, ब्राह्मण र अतिथिहरूको पूजा गरे। त्यसबेला अत्यन्त बुद्धिमान् बृहस्पतिले विभिन्न पूजाहरू ग्रहण गरे अनि सभाको बीचमा गएर उनीहरूलाई भने – हे देवता हो ! मेरो सत्य कुरा सुन। देवताहरूले धेरै समयसम्म स्वर्ग छोडेर यहाँ बस्न हुँदैन। यस संसारमा धेरै उपद्रवीहरू छन्। स्वर्गको इच्छा गर्ने व्यक्तिहरूले अवश्य नै उपद्रव मच्चाउनेछन् ॥१९-२०½॥

देवलले भने – गुरुको यो वाक्य सत्य छ, प्राणीका निमित्त हितकारक छ। जो गुरुले भन्नुभयो, त्यो हाम्रा निमित्त अत्यन्त हितकारक छ। हे देवता हो ! तिमीहरू जाओ, स्वर्ग नछोड। बृहस्पतिले अवज्ञापूर्वक नै भए पनि जुन तथ्य वाक्य बोल्नुभएको छ त्यो झुटो हुँदैन ॥२१-२२॥

---

३. अभिषेकम्, इति न.सं.पु.पाठः। ४. अदुः शुक्रं चक्रुस्ततश्च ते, इति न.सं.पु.पाठः। ५. राजत्वं भवतु, इति न.सं.पु.पाठः।
६. प्राज्ञ अवदत्तान्, इति न.सं.पु.पाठः। ७. भविष्यति, इति न.सं.पु.पाठः। ८. ...अत्याज्यः त्रिदिवः किल, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

जीवदेवलयोर्वाक्यं तथ्यं कृत्वाऽमरास्तदा ॥२३॥
गन्तुं प्रचक्रिरे नाकं पुरोधायाऽशु काश्यपम् । तत्काले तेजसां पुञ्जश्चान्तरिक्षादुवाच च ॥२४॥
प्रस्थितानाञ्च तच्चेष्टां सम्प्रेक्ष्य त्रिदिवं प्रति ।

ज्योतीरूप उवाच

मा नीयतां सुराः शक्रं तपोहीनं त्रिविष्टपम् ॥२५॥
न लभ्यते दिवं पूज्यं तपोभिः कठिनैर्विना । अस्ति चेदमरावत्यां कर्त्तुं राज्ये सुखोत्तमम् ॥२६॥
तप्यतां च तपः शक्र हिमवच्छिखरोत्तमे ।

स्कन्द उवाच

इत्याकर्ण्य महावाक्यं सुतेजोरूपिणो विभोः ॥२७॥
चित्रेण मनसा शक्रः समद्राक्षीद् गुरोर्मुखम् । गुरुणोक्ते ऋते वाक्ये नमस्कृत्य गुरुं शिवम् ॥२८॥
तपः कर्त्तुं ययौ शक्रो हिमवच्छिखरोत्तमे । प्राचीं दिशं समागत्य दर्भवति शिलोच्चये ॥२९॥
तपश्चकार शक्रो वै त्रिविधं सुसमाहितः ।

अगस्त्य उवाच

पीत्वाऽहं लालसीभूतस्त्वन्मुखाम्भोजनिःसृताम् ॥३०॥
सुधामनुपमां पातुं माधुर्यात् प्रेरितः पुनः[१] । विशाख विधिना केन प्रकारेण हिमाचले ॥३१॥
तपश्चक्रे तदा शक्रो वद मे तद्यथाविधि ।

स्कन्द उवाच

ब्रह्मपुत्रो नदः श्रेष्ठ आर्य्या नाम परा नदी ॥३२॥
तयोश्च सङ्गमे तीर्थं शक्रस्योदाहृतं मुने । गङ्गायां शतधा स्नात्वा दत्त्वा दायाँस्तथैव च ॥३३॥
तत्रैव यः सकृत् स्नाति स शक्रो नात्र संशयः ।

---

कार्तिक स्वामीले भन्नुभयो – बृहस्पति र देवलको वचनलाई सत्य ठानेर देवताहरू स्वर्गतिर लागे । त्यसैबेला एउटा तेजको पुञ्जले स्वर्ग जान लागेका देवताहरूको चेष्टा देखेर अन्तरीक्षबाट उनीहरूलाई भन्यो ॥२३-२४½॥

ज्योतिरूपले भन्नुभयो – हे देवता हो ! तपस्याविहीन इन्द्रलाई स्वर्गमा नलैजाओ । कठिन तपस्या नगरी स्वर्गको पूज्य स्थान प्राप्त गर्न सकिँदैन । हे शक्र ! यदि अमरावतीमा उत्तम सुखका साथ राज्य गर्ने इच्छा छ भने हिमालयपर्वतको शिखरमा गई तपस्या गर ॥२५-२६½॥

कार्तिक स्वामीले भन्नुभयो – तेजस्वरूप भएका परमेश्वरको त्यो महावाक्य सुनेर इन्द्रले मनमनै आश्चर्य मान्दै बृहस्पतिको मुख हेरे । बृहस्पतिबाट कुरो सत्य हो भन्ने थाहा पाएर बृहस्पति र शिवजीलाई नमस्कार गरी इन्द्र हिमालयको उत्तम शिखरमा तपस्या गर्न गए । इन्द्रले पूर्व दिशातिर गएर कुशैकुशले युक्त भएको दर्भवान् नामक हिमालयको शिखरमा तीनै प्रकारका विधिले एकाग्रचित्त भई तपस्या गरे ॥२७-२९½॥

अगस्त्यले भन्नुभयो – हे कार्तिक स्वामी ! तपाईंको मुखरूपी कमलबाट निस्केको सुमधुर वचनरूपी अमृतपान गरेर त्यसैका स्वादले प्रेरित हुँदै पुनः अमृतपान गर्ने मेरो तीव्र लालसा छ । हे कुमार ! इन्द्रले हिमालयमा के-कस्तो विधिले तपस्या गरे ? त्यो विधि मलाई बताउनुहोस् ॥३०-३१½।

कार्तिक स्वामीले भन्नुभयो – नदहरूमा श्रेष्ठ ब्रह्मपुत्र र नदीहरूमा श्रेष्ठ आर्या नदी हुन् । हे मुनि ! ती दुईको सङ्गममा 'शक्र' नामक तीर्थ छ । गङ्गामा सय पटक स्नान गरेर दान दिने कुनै पनि व्यक्तिले इन्द्रपद पाउँछ भने यस तीर्थमा एकपटक मात्रै भए पनि स्नान गरेमा मानिसले इन्द्रपद पाउँछ, यसमा सन्देह छैन ॥३२-३३॥

---

१. माधुर्येण सुप्रेरितः, इति न.सं.पु.पाठः ।

१क. सकृद्यः स्नायते तत्र, इति न.सं.पु.पाठः ।

भाद्रकृष्णत्रयोदश्यां पूर्वभाद्रर्क्षसंयुते ॥३४॥
गुरोर्मन्त्रोपदिष्टोऽसौ हिमाद्रिं प्रययौ मुदा। कुशोदकं समादाय धौतास्याङ्घ्रिकरो हि सः ॥३५॥
सुप्तितङन्तचर्यैर्वाक्यैः सङ्कल्पपाठपूर्वकम्[१०] । सस्नौ शक्रो महत्तीर्थे ह्रदेप्सितप्रदे शुभे ॥३६॥
विलिप्य भस्मना गात्रमापादतलमस्तकम्। रुद्राक्षांश्च दधानोऽसौ युक्ते स्थाने तथाविधे ॥३७॥
त्रिपुण्ड्रकं ललाटे च कृत्वा शक्रः सुरोत्तमः। ददौ दानानि विप्रेभ्यश्चैकचित्तः समाहितः ॥३८॥
आरुरोह ततः शक्रो रत्नकोटिं हिमाचलम्। हिमैः प्रभूषिते कूटे बबन्धासनमादृतः ॥३९॥
पद्मरागमयं लिङ्गं संस्थाप्य विधिवद् वृषा। दिव्यासने[११] समासीनो भक्त्याच्र्चनैरपूपुजत् ॥४०॥
ततो गन्धैः प्रसूनैश्च धूपैर्दीपैर्बलीवरैः। भूत्वा सुनिर्ज्जनः शक्रश्चाऽष्टपर्वसु[१२] चैव हि ॥४१॥
समुत्सृज्य च षड्वर्गान् प्रसन्नवदनः शुचिः। मोहकञ्चुकमुत्सृज्य ज्ञानकञ्चुकसंवृतः ॥४२॥
पूर्वोक्तयोगमाख्याय सर्वं मानससम्भवम्। तपश्चकार योगीशो योगधर्मं समाश्रितः ॥४३॥
ध्यात्वा ज्योतिः परं रुद्रं लिङ्गं स्वात्मनि चात्मना। दिव्यवर्षशतं साग्रं शक्रो मनुं जजाप हि ॥४४॥
ततो वर्षशतान्ते स[१३] भगवान् भूतभावनः। आविर्बभूव देवेशः सर्वतेजोमयो विभुः ॥४५॥
वरं दातुं ततो लिङ्गाद् व्यक्तीकृत्य कलेवरम्। सुहृष्टवाँस्तमालोक्य जपन्तं निर्ज्जनं मुदा ॥४६॥
ददर्श भगवन्तं स देवं त्रिभुवनेश्वरम्। व्यक्तरूपं महादेवं सर्वतेजोमयं शिवम् ॥४७॥
त्रिनेत्रं द्विकरं शान्तं मुण्डमालाविभूषितम्। खट्वाङ्गञ्च त्रिशूलञ्च प्रदधानं विभुं मुने ॥४८॥

---

भाद्रकृष्ण त्रयोदशी र पूर्वभाद्र नक्षत्र परेको दिनमा इन्द्रमहाराज गुरुबाट मन्त्र तथा उपदेश प्राप्त गरी तपस्या गर्न खुसी हुँदै हिमालय पर्वतमा गए। हात, मुख र पाउ धोएर कुश पानी लिई तिङन्त र सुबन्तका वाक्यहरूले सङ्कल्प गर्दै मनले चिताएको फल पाइने, कल्याणदायक त्यस ठूलो तीर्थमा इन्द्रले स्नान गरे। त्यस उत्तम तीर्थमा शिरदेखि पाउसम्म शरीरमा भस्म लेपन गरी अङ्गहरूमा रुद्राक्ष लगाए ॥३२-३७॥

देवराज इन्द्रले निधारको माझमा त्रिपुण्ड्रक लगाएर एकचित्त र सावधान भई ब्राह्मणहरूलाई दान दिए। त्यसपछि उनी रत्नकोटि नाम गरेको हिमालयपर्वतको शिखरमा चढे। हिउँ नै हिउँ भएको त्यस शिखरमा श्रद्धापूर्वक आसन बाँधे। पद्मराग मणिले बनेको शिवजीको लिङ्गलाई विधिपूर्वक स्थापना गरेर दिव्य आसनमा बसाली इन्द्रले भक्तिपूर्वक पूजासामग्रीले पूजा गरे। त्यसपछि चन्दन, फूल, धूप, दीप, नैवेद्य लिएर इन्द्रले एकान्तस्थलमा बसेर आठै प्रहरमा लिङ्गको पूजा गरे। काम, क्रोध आदि छ वर्गलाई त्यागेर, पवित्र भई प्रसन्न चित्तले मोहरूपी चोलालाई फालेर ज्ञानरूपी चोला लिए। पहिले भनिएको योगविधिलाई अँगाली योगी भएर योगधर्मले युक्त भई अत्यन्त परिश्रमपूर्वक तपस्या गरे॥ यसरी एकाग्र चित्त भएर शिवजीको ज्योतिर्लिङ्गको ध्यान गर्दै इन्द्रले दिव्य एक सय वर्षभन्दा बढी शिवमन्त्र जपे ॥३८-४४॥

एक सय वर्ष बितेपछि प्राणीका कल्याणकारक, देवताका अधिपति, तेजोमय भगवान् शङ्कर प्रत्यक्ष हुनुभयो। भगवान् शङ्करले इन्द्रलाई वर दिनका लागि आफ्नो शरीरलाई लिङ्गबाट प्रकट गर्नुभयो। एक्लै आनन्दसित जप गरिरहेका इन्द्रलाई देखेर उहाँ अत्यन्त प्रसन्न हुनुभयो। ती इन्द्रले पनि त्रिभुवनका मालिक, रूपधारी तेजोमय ती महादेव भगवान् शिवलाई देखे। भगवान् शिव तीन आँखा भएका हुनुहुन्थ्यो। उहाँको स्वरूप शान्त थियो। उहाँले मुण्डमाला लगाउनुभएको थियो अनि हातमा खट्वाङ्ग र त्रिशूल लिनुभएको थियो। ।४५-४८॥

---

१०. तिङ्सुवन्तचर्यैर्वाक्यैः सङ्कल्पतेऽद्यपूर्वतः, इति न.सं.पु.पाठः।
११. दिव्यासनम्, इति न.सं.पु.पाठः।
१२. शक्र अष्टपर्वसु, इति न.सं.पु.पाठः।
१३. तद्, इति न.सं.पु.पाठः।

देव्यालिङ्गित[१४]हस्ताब्जमजं गुह्यजनार्चितम्। नागभूषणभूषाढ्यमीषत्प्रहसिताननम्॥४९॥
गङ्गोज्ज्वलजटाशीर्षं चन्द्रखण्डविभूषणम्। चन्द्राननं शिवं सौम्यं भूतिभूषणविग्रहम्॥५०॥
तं परिक्रम्य हृष्टोऽसौ प्रणम्य दण्डवत् शिवम्[१५]। स्तुतिं चक्रे तदा भक्त्या वाक्कायमानसैर्मुदा॥५१॥

शक्र उवाच

ॐ नमस्त्रिशूलहस्ताय रुद्राय परमात्मने। सृष्टिस्थितिविनाशाय कपालिने नमो नमः॥५२॥
ब्रह्माण्डभाण्डरूपाय जगद्धात्रे महात्मने। विभूतिभूषिताङ्गाय त्रिलोचन नमोऽस्तु ते॥५३॥
खट्वाङ्गधारिणे तुभ्यं कपालमालिने मृड। शिपिविष्टाय भीमाय व्योमकेश नमोऽस्तु ते॥५४॥
भक्तवत्सलरूपाय शान्ताय शान्तिरूपिणे। आत्मने देहरूपाय चक्षुरूप नमोऽस्तु ते॥५५॥
घ्राणनासास्वरूपाय[१६] श्रोत्रस्थाय च वायवे। जिह्वारसस्वरूपाय[१७] कण्ठरूप नमोऽस्तु ते॥५६॥
नाभिस्थाय समीराय प्राणापानस्वरूपिणे। समानोदानरूपाय व्यापिने जन्मिने नमः॥५७॥
जठरस्थाग्निरूपाय ह्यग्निरूपाय शम्भवे। भोक्त्रे च भोज्यरूपाय पोषकर्त्रे नमो नमः॥५८॥
प्रज्ञाचित्तस्वरूपाय[१८] वह्निरूपाय शम्भवे। क्रोधाय मांसिनेऽजाय परमेश नमोऽस्तुते॥५९॥
चैतन्याय च जीवाय मायास्वरूपिणे हर। परापरात्मरूपाय परातीताय ते नमः॥६०॥
अलक्ष्याय च लक्ष्याय भावरूपाय भाविने। भक्तवत्सल माता त्वमष्टैश्वर्यपिता भवान्॥६१॥
क्षन्तव्यं मम नाथेश सर्वभूतहिते रत। अपराधसहस्राणि दुरात्मनो ह्यजानतः॥६२॥

---

भगवान् शिवले हस्तकमलले पार्वतीलाई अङ्कमाल गर्नुभएको थियो। जन्म तथा मृत्यु नभएका, यक्षद्वारा पूजित भगवान् शिवले नागको गहना लगाउनुभएको थियो र उहाँको अनुहार मन्द मुस्कानले युक्त थियो। गङ्गाले गर्दा उहाँको जटा र शिर नै उज्यालो थियो। अर्धचन्द्रको गहना लगाउनुभएको थियो। चन्द्रमाको जस्तै अत्यन्त उज्यालो अनुहार थियो। उहाँको स्वरूप कल्याणकर र शान्त थियो अनि शरीरमा भस्मलेपन गर्नुभएको थियो॥४७-५०॥

यस्ता शिवजीलाई देखेर इन्द्रले खुसी हुँदै तीन पटक उहाँको परिक्रमा गरे र साष्टाङ्ग दण्डवत् प्रणाम गर्दै वचन, शरीर र मनद्वारा अत्यन्त प्रसन्न भएर भक्तिपूर्वक स्तुति गरे। इन्द्रले भने – हे हातमा त्रिशूलधारी भगवन्! परमात्मस्वरूपले रहनुभएका, सृष्टि, स्थिति र संहारको कारण भएका, मुण्डमाला लगाउने हजुर रुद्रलाई बारम्बार नमस्कार छ। हे त्रिलोचन! हजुर सारा ब्रह्माण्डको आधारस्वरूप भएका, जगत्लाई धारण गर्ने, महात्मा, शरीरभरि विभूति धारण गरी सुहाउनुभएको छ। हे त्रिलोचन! हजुरलाई नमस्कार छ। खट्वाङ्ग धारण गरेका, खप्परको माला लगाएका, डरलाग्दो स्वरूप भएका हे शिपिविष्ट! हे व्योमकेश! हे रुद्र! हजुरलाई नमस्कार छ। भक्तवत्सल, शान्त, शान्ति रूप लिने, देह, आत्मा र ज्ञानस्वरूप भएका हे चक्षुरूप शिव! हजुरलाई नमस्कार छ॥५१-५५॥

हे प्रभो! नाकमा प्राणस्वरूप भएका, कानमा वायुस्वरूप भएका र जिब्रोमा रसस्वरूप भएका हे कण्ठस्वरूप नीलकण्ठ! हजुरलाई नमस्कार छ। नाभिमा समीरस्वरूप भएका तथा प्राण, अपान, समान र उदान वायुको रूप लिएर संसारलाई ढाक्दै प्रादुर्भाव हुने हजुरलाई नमस्कार छ। जठराग्नि तथा अग्निस्वरूप भएका, भोक्ता तथा भोज्य रूप लिने, पोषणकर्ता, भगवान् शम्भुलाई बारम्बार नमस्कार छ। सबै कुरा जान्ने, प्रज्ञाचित्तस्वरूप भएका, मनद्वारा जान्न सकिने, भीषण क्रोधी र स्थूलरूप भएका, अजन्मा हे रुद्र! हजुरलाई नमस्कार छ॥५६-५९॥

चैतन्यस्वरूप, जीवस्वरूप, मायास्वरूप, परभन्दा पनि परका आत्मरूप र परभन्दा पनि पर रहने हे रुद्र! हजुरलाई नमस्कार छ। सीमा नभएका, उद्देश्ययुक्त भावरूप भएका, भाव जान्ने, अष्टमातृकास्वरूप र अष्टैश्वर्यका जनक हे भक्तवत्सल! हजुरलाई नमस्कार छ। सबै प्राणीमाथि दया गर्ने हे प्रभो! मबाट नजानीकन भएका दुराचार तथा हजारौं अपराधलाई क्षमा गर्नुहोस्॥६०-६२॥

---

१४. लिङ्गन, इति न.सं.पु.पाठः।
१५. दण्डवन्नम्य शूलिनम्, इति न.सं.पु.पाठः।
१६. घ्राणस्थाय च नासाय, इति न.सं.पु.पाठः।
१७. जिह्वाय रसरूपाय, इति न.सं.पु.पाठः।
१८. प्रज्ञाय चित्तरूपाय, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

आकर्ण्येति स्तवं दिव्यं[१९] हृष्टवान् स महेश्वरः। संस्तुतः किल शक्रेण भक्त्या त्रिविधया मुदा[२०] ॥६३॥
तपःस्थाय च शक्राय प्रेक्ष्य चोग्रञ्च तत्तपः। वरं दातुं तदा रुद्र उवाच वचनं मुने ॥६४॥

श्रीश्वर उवाच

अहो वत्स त्वया तप्तं सुदुश्चरं महातपः। अमानुष्यमिदं कर्म स्वात्मोद्धारणहेतुकम् ॥६५॥
अतो दर्शयितुं त्वां च व्यक्तरूपं हिमाचले। केवलञ्च प्रसीदामि हिमाद्रौ यत्फलं विदुः ॥६६॥
वरं वरय धर्मज्ञ यत्त्वं वाञ्छसि साम्प्रतम्। ज्ञात्वा कामदुघं मां त्वमिति तपःपरायणः ॥६७॥
मघवँस्ते स्तवं दिव्यं यः पठिष्यति मानवः। सर्वपापविनिर्मुक्तः स यास्यति च ते पुरीम् ॥६८॥
शत्रवो विलयं यान्ति तस्य वक्त्रावलोकनात्। पठनाच्च स्तवं शक्र[२१] रोगशोकभयापहम् ॥६९॥
असाध्यं साधयेत्कार्यं त्वत्स्तवपाठको बुधः। मेदिन्यां जायते यर्हि तव तुल्यो न संशयः ॥७०॥

स्कन्द उवाच

ततः शक्रो मुदा युक्तो निशम्य[२२] शीतलं वचः। प्रार्थितवान् महादेवं गद्गदस्वरया[२३] गिरा ॥७१॥
विधाय स्वाञ्जलिं मूर्ध्नि कृत्वा प्रदक्षिणां[२४] पुनः। ततो ननाम देवेशं वरं दातुं समागतम् ॥७२॥

शक्र उवाच

वरं समुत्सहे नाहं वरमन्यं वरप्रद। विबुधैर्मे हि यद्दत्तं याचे भवन्तमीश तत् ॥७३॥

ईश्वर उवाच

वत्साद्यप्रभृति त्वं हि भवसीन्द्रो[२५] सुरार्च्चकः। यज्ञानामाद्यभोक्ता त्वं विबुधानां क्रमात्प्रभुः ॥७४॥
त्वच्छासने रता देवाः प्रभविष्यन्ति नान्यथा। अमराया अधीशत्वमैश्वर्य्यञ्च[२६] ददामि ते ॥७५॥

---

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! इन्द्रले यसरी तीन किसिमका भक्तिले सम्पन्न स्तुति गरेको सुनेर त्यसलाई भगवान् शङ्करले प्रशंसा गर्नुभयो। आसन बाँधी कठोर तपस्यामा तत्पर इन्द्रलाई देखेर भगवान् शङ्करले वर दिनका लागि भन्नुभयो ॥६३–६४॥

महादेवले भन्नुभयो – हे बाबु ! कसैले गर्न नसकेको ठूलो तपस्या तिमीले गऱ्यौ। आफ्नो उद्धारका निमित्त गरिने यो कर्म मानिसबाट सम्भव थिएन। यसकारण तिमीलाई मेरो प्रत्यक्ष स्वरूप देखाउन हिमालयमा प्रकट भएँ, म तिमीप्रति प्रसन्न छु। यो फल हिमालयमा गरेको पुण्यकार्यको परिणाम हो। म तिमीदेखि ज्यादै प्रसन्न छु। हे धर्मज्ञ ! अहिले तिम्रो मनमा जे इच्छा छ, त्यो वर माग। मलाई कामधेनुजस्तै सम्झ। हे तपस्वी ! म तिमीलाई चिताएको फल दिन्छु। हे इन्द्र ! तिमीले जुन स्तुति गऱ्यौ, त्यो दिव्य स्तुति जसले पाठ गर्छ, त्यो मानिस सबै पापबाट मुक्त भएर तिम्रो पुरीमा जानेछ। हे इन्द्र ! यो स्तोत्र पाठ गर्ने व्यक्तिको मुख देख्नेबित्तिकै शत्रुहरू नाश हुनेछन्। जसले तिम्रो स्तोत्र पाठ गर्छ, त्यसका सबै रोग, शोक र भय नाश हुनेछन्। तिमीले गरेको स्तोत्र पाठ गर्ने विद्वान्‌ले असाध्य काम पनि सिद्ध गर्न सक्नेछ। पृथ्वीमा बसे तापनि त्यो व्यक्ति तिमीजस्तै हुनेछ, यसमा सन्देह छैन ॥६५–७०॥

कार्तिक स्वामीले भन्नुभयो – त्यसपछि शङ्करको शीतल वचन सुनेर अत्यन्त हर्षित भएका इन्द्रले प्रफुल्ल हुँदै गद्गद बोलीद्वारा शिवजीको प्रार्थना गरे। त्यसपछि इन्द्रले आफ्नो अञ्जलि शिरमा राखेर बारम्बार प्रदक्षिणा गर्दै वर दिनका निमित्त उपस्थित हुनुभएका देवताका स्वामी भगवान् शङ्करलाई नमस्कार गरे ॥७१–७२॥

इन्द्रले भने – हे ईश्वर ! म अरू कुनै वर प्राप्त गर्न उत्सुक छैन। देवताहरूले पहिले मलाई जुन वर दिएका थिए, त्यही वर हजुरसित माग्दछु ॥७३॥

महादेवले भन्नुभयो – हे बाबु ! आजदेखि तिमी देवताहरूद्वारा पूज्य इन्द्र भए। यज्ञमा देवताहरूभन्दा पहिलो भोक्ता तिमी हुनेछौ। क्रमैले देवताहरूको स्वामीको स्थान तिमीलाई उपलब्ध हुनेछ। तिम्रो शासनकालमा देवताहरूले कुनै प्रकारको दुःख पाउने छैनन्। तिमी पनि अमरावतीको स्वामी हुनेछौ, त्यहाँको सारा ऐश्वर्य तिमीलाई दिन्छु ॥७४–७५॥

---

१९. प्रहृष्टवान्, इति न.सं.पु.पाठः।
२०. त्रिविधैर्भक्तिपूर्वकम्, इति न.सं.पु.पाठः।
२१. पठियन्ति स्तवं शक्र, इति न.सं.पु.पाठः।
२२. आकर्ण्य, इति न.सं.पु.पाठः।
२३. वाक्यं गद्गदया, इति न.सं.पु.पाठः।
२४. कृत्वा प्रदक्षिणां पुनः, इति न.सं.पु.पाठः।
२५. त्वञ्च शक्रो भव, इति न.सं.पु.पाठः।
२६. क अधीशस्त्वममरावतमैश्वर्यत्वम्, इति न.सं.पु.पाठः।

भूयो ददामि ते शक्र दिशः प्राच्याश्च[२७] पालनम्। मेरोः प्राग्भागतः शृङ्गे तव स्थानं भविष्यति ॥७६॥
प्राचीनवर्हिषो नाम तव लोको भविष्यति। तस्मात्प्राच्याः सदा शास्ता कर्त्ता हर्त्ता भविष्यसि ॥७७॥
गच्छ शक्राऽमरावत्यां पालयितुं दिशञ्च ताम्। विबुधानामभिषेकमादाय तैः समं ध्रुवम् ॥७८॥

स्कन्द उवाच

वरं यथेप्सितं दत्त्वा सर्ववरमनुत्तमम्। तपसा नन्दितो विप्र ! ययौ त्वन्तर्हितं दिवि ॥७९॥
देवाः समागत्य ततोऽन्तरीक्षादालोक्य शक्रं तपसा प्रयुक्तम्।
हर्षं प्रचक्रुः सुवरं गिरीशात् संस्पृश्य[२८] हस्तैः समहर्षकम्पैः ॥८०॥
ततो देवगणाः सर्वे प्राच्यां सानु ययुगिरिः। बृहस्पतिमुखा विप्राः कृत्वा शक्रं पुरस्तदा ॥८१॥
मरीचिश्च तथा चाऽत्रिः पुलस्त्यो मुनिसत्तमः। पुलहश्च क्रतुश्चैव भृगुरङ्गिरसस्तथा ॥८२॥
ब्रह्मा च नारदश्चैव सिद्धाश्च मुनिसत्तमाः। मार्कण्डेयश्चिरायुश्च दधीचिर्मुनिसत्तमः ॥८३॥
सनच्च सनकश्चैव सनातनः सनन्दनः। सनत्कुमारो धर्मिष्ठो ब्रह्मा च कपिलस्तथा ॥८४॥
गन्धर्वाश्च तथा चाऽन्ये वसवश्चाऽप्सरोगणाः। सूर्यश्च चन्द्रमा ऋक्षा विष्णुश्चैव तथापरे ॥८५॥
तस्मै दत्त्वाऽभिषेकं यदार्यातीर्थोद्धृतैर्जलैः। प्राक्सानुनि[२९] सुमेरोस्तं स्थापयामासुरादृताः[३०] ॥८६॥

अगस्त्य उवाच

स्कन्द कथं ददुर्देवा अभिषेकं महात्मने। देवर्षयश्च गन्धर्वास्तथा चाऽप्सरसां गणाः ॥८७॥
कस्मिन् स्थाने महाशृङ्गे सिद्धाश्च मुनिसत्तमाः। श्रोतुमिच्छामि चैतद्धि वद मे सर्वविद्विभो ॥८८॥

---

हे इन्द्र ! फेरि म तिमीलाई पूर्व दिशाको पालना गर्ने पद दिन्छु। सुमेरु पर्वतदेखि पूर्वपट्टिको भाग तिम्रो क्षेत्र हुनेछ। तिम्रो लोकको नाम प्राचीनबर्हि रहनेछ। त्यसैले तिमी पूर्व दिशाका शासक, कर्ता र हर्ता हुनेछौ। हे शक्र ! देवताहरूको अभिषेक लिएर तिमी उनीहरूका साथ अमरावती र पूर्व दिशाको पालन गर्न जाऊ ॥७६-७८॥

कार्तिक स्वामीले भन्नुभयो - इन्द्रको तपस्याबाट प्रसन्न हुनुभएका भगवान् शङ्कर उनलाई इच्छा लागेको सर्वोत्तम वर दिएर आकाशमा अन्तर्धान हुनुभयो। त्यसपछि अन्तरिक्षबाट देवताहरू आएर तपस्याद्वारा महादेवबाट उत्तम वर प्राप्त गर्ने इन्द्रलाई देखी हर्षोल्लास मनाए र हात हल्लाउँदै छोएर स्यावासी दिए। त्यसपछि सबै देवताका गणहरू बृहस्पति प्रमुख भएका ब्राह्मणहरू इन्द्रलाई अगाडि लगाएर पूर्व दिशाको पर्वतको टाकुरामा गए। उनीहरूसँगै जाने ब्राह्मणहरूमा मरीचि, अत्रि, पुलस्त्य, पुलह, ऋतु, भृगु, अङ्गिरा, ब्रह्मा, नारद, सिद्ध, मार्कण्डेय, चिरायु दधीचि, मुनिहरूमा उत्तम सनक, सनन्दन, सनातन, सनत्कुमार, धर्मिष्ठ ब्रह्मा तथा कपिल आदि ऋषिहरू थिए ॥७९-८४॥

साथमा गन्धर्व, वसुगण, अप्सरागण, आदित्य, चन्द्रमा, नक्षत्र, विष्णु आदि सबै देवताहरू पनि सम्मिलित थिए। यसरी सबै देवता तथा ब्राह्मणहरू जम्मा भए र तिनीहरूले आर्यातीर्थबाट ल्याएको जलले अभिषेक गरेर सुमेरुको पूर्वपट्टिको टाकुरामा आदरपूर्वक इन्द्रलाई आसीन गराई राज्याभिषेक गरिदिए ॥८५-८६॥

अगस्त्यले भन्नुभयो - हे कार्तिक स्वामी ! महात्मा इन्द्रलाई देवता, देवर्षि, गन्धर्व तथा अप्सरागणहरूले कसरी राज्याभिषेक दिए ?। हे सर्वज्ञ ! कुन ठाउँको कुन चुचुरोमा सिद्ध मुनिहरूले अभिषेक गरे, त्यो सबै सुन्न चाहन्छु, बताउनुहोस् ॥८७-८८॥

---

२७. प्राचीदिशश्च, इति न.सं.पु.पाठः।
२८. संस्पर्श्य, इति न.सं.पु.पाठः।
२९. प्राचीसानौ, इति न.सं.पु.पाठः।
३०. स्थापितेनैव चाद्रिताः, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

हिमाद्रे रत्नकोट्यां तमानीय विधिवत्तदा। रत्नसिंहासने दिव्ये प्रविश्योदङ्मुखं मुने ॥८९॥
शक्रतीर्थजलं पुण्यमानीय विधिपूर्वकम्। अभिषेकं ददुस्तस्मै सुवर्णकलशोद्धतैः ॥९०॥
ददौ ब्रह्मा पठन् वेदान् बृहस्पतिस्तथैव च। सप्तर्षय ऋचाभिश्चाऽभिषेकं प्रददुर्मुहुः ॥९१॥
स्तुवन्तो हि सुराश्चाऽन्ये[३१] सिद्धा मन्त्रगणैस्तथा। गन्धर्वा गीतवाद्यैश्च नृत्यैरप्सरसां गणाः ॥९२॥
गुरुणा सोऽर्च्चितः[३२] पश्चाच्चन्दनैर्विविधैर्मुदा। सर्वैश्वर्यं ददौ ब्रह्मा सुराधिपत्वमुत्तमम्[३३] ॥९३॥
ददौ सूर्यः पुनस्तस्मै चाभिषेकं वरोत्तमम्। रिपूणामसहं तापं सहस्रांशुः स्वतेजसाम् ॥९४॥
ददौ च चन्द्रमास्तस्मै ह्यभिषेकं पुनर्वरम्। देवानां सुखदं दिव्यं शीतलञ्च महोज्ज्वलम् ॥९५॥
विष्णुश्चैव ददौ भूयो ह्यभिषेकं वरोत्तमम्। रिपूणां भयदं क्रोधं दैत्यशत्रुविमर्दकम् ॥९६॥
पुलोमा च ददौ कन्यां शचीन्नाम्नीं महासतीम्। उपयेमे यथा शक्रो विधिवद्द्विजसत्तमैः ॥९७॥
वाद्यं चक्रुर्दिविस्थाश्च दध्मुः शङ्खाँस्ततो मुदा। भेरीँश्च दुन्दुभीन् काँस्यं मृदङ्गाँश्च तथाऽपरान् ॥९८॥
देवकन्या जगुस्तत्र ववृषुः पुष्पवृष्टयः। ननृतुश्चाऽप्सरोवृन्दा आशिषो मुनयो ददुः ॥९९॥
जयशब्दस्ततो भूयो ह्यभूत्तत्र समन्ततः। आनर्च्चुश्च ततोऽगस्त्य देवर्षयस्तथाऽपरे ॥१००॥
ततो देवगणैः सार्द्धं ययौ शक्रोऽमरावतीम्। गन्धर्वैश्चाऽप्सरोभिश्च विमानस्थो मुदाऽन्वितः ॥१०१॥
ततोऽमरावतीराज्यं रक्षयामास[३४] निर्ज्जरान्। तदाप्रभृति चाऽद्यापि स दिक्पालोऽभवद्वृषा ॥१०२॥
रत्नकोटिगिरिं तस्मादारोहति सुनिश्चयः। आर्य्यातीर्थजले स्नात्वा[३५] शक्रलोके वसेच्चिरम् ॥१०३॥

---

कार्तिक स्वामीले भन्नुभयो – हे मुनि ! हिमालयको रत्नकोटिनामक टकुरामा इन्द्रलाई ल्याएर दिव्य रत्नयुक्त सिंहासनमा उत्तर मुख पारेर बस्न लगाई विधिपूर्वक शक्रतीर्थको पवित्र जल सुनको कलशमा राखेर त्यसले अभिषेक गरे। ब्रह्मा र बृहस्पतिले वेद पढ्दै अभिषेक दिए। फेरि सप्तर्षिले पनि वेदका ऋचा पढ्दै बारम्बार अभिषेक गरे। देवताहरूले स्तुति गरे, सिद्धहरूले मन्त्र जपे, गन्धर्वहरूले गीत गाए, अप्सराहरूले नृत्य गर्दै अभिषेक गरे। त्यसपछि बृहस्पतिले थरीथरीका चन्दनहरू छर्केर पूजा गरे। ब्रह्माजीले महेन्द्रलाई सम्पूर्ण ऐश्वर्य प्रदान गरे ॥८९-९३॥

सूर्यले इन्द्रलाई उत्तम अभिषेक दिएर शत्रुहरूले सहन गर्न नसक्ने आफ्नो तेजको हजार अंशमा एक अंश उनलाई दिए। चन्द्रमाले उनलाई अभिषेक गरेर वरस्वरूप देवताहरूलाई सुख दिने दिव्य, शीतल र उज्वल प्रकाश दिए। फेरि विष्णुले अभिषेक गरेर उत्तम वरस्वरूप दैत्यशत्रुहरूलाई मर्दन गर्न सक्ने भय र क्रोध दिए। पुलोमाले महासती शचीनामकी कन्या दिए। ऋषिहरूले बताएको विधिविधान अनुसार इन्द्रले शचीका साथ विवाह गरे। आकाशमा रहेका देवताहरूले हर्षित हुँदै शङ्ख, कर्णाल, दमाहा, भ्याली, मादल र अनेक प्रकारका बाजाहरू बजाए। देवकन्याहरूले गीत गाउँदै पुष्पवृष्टि गरे, अप्सराहरू नाचे र मुनिहरूले आशीर्वाद दिए ॥९४-९९॥

हे अगस्त्य मुनि ! त्यसपछि चारैतिर त्यहाँ जय-जयकार भयो। देवर्षि तथा अरूहरूले पनि इन्द्रको पूजा गरे। त्यसपछि देवता, गन्धर्व र अप्सराका साथै विमानमा चढेर खुसी हुँदै इन्द्र अमरावती गए। अमरावतीमा पुगेपछि इन्द्रले देवताहरूको रक्षा गर्दै अमरावतीको राज्य गरे। त्यसै समयदेखि आजसम्म उनी दिक्पाल छँदैछन्। त्यसैले जसले रत्नकोटि पर्वतमा चढेर आर्यातीर्थको जलमा स्नान गरेको हुन्छ, त्यो व्यक्ति धेरै समयसम्म इन्द्रलोकमा बस्न पाउँछ ॥१००-१०३॥

---

३१. स्तुवन् देवास्तथा चान्ये, इति न.सं.पु.पाठः।
३२. चार्चितः, इति न.सं.पु.पाठः।
३३. ददौ ब्रह्मा पुनस्तस्मै सर्वैश्वर्यसुराधिपम्, इति न.सं.पु.पाठः।
३४. अमरावतीं राज्यं रक्षां चकार, इति न.सं.पु.पाठः।
३५. आर्यतीर्थजलाप्लाव्य, इति न.सं.पु.पाठः।

ततश्च वह्निः सुतपा हिमाद्रौ चकार नूनं सहजः सुतेजाः ।
श्रुत्वा च शक्रेण फलं प्रलब्धं सोऽभूद्विदिक्पालक आर्य भूयः ॥१०४॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे शक्राभिषेको नाम द्वादशोऽध्यायः ॥१२॥

---

हे आर्य ! त्यसपछि इन्द्रले फल पाएको सुनेर जन्मजात तेजस्वी अग्निले हिमालयपर्वतमा गई तपस्या गरे। त्यही तपस्याको फलस्वरूप उनी आग्नेय दिशाका पालक भए ॥१०४॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गत हिमवत्खण्डमा इन्द्रको राज्याभिषेकनामक बाह्रौं अध्याय पूर्ण भयो।

# त्रयोदशोऽध्यायः

## अग्नेर्दिक्पालकत्वेन प्रतिष्ठा

लोमहर्षण उवाच

निशम्य घटयोनिस्तत्पुराणं स्कन्दवक्त्रजम्। भृशं मुमोद विप्रार्य्यः पुनः श्रोतुमना अभूत् ॥१॥
शृणुध्वं मुनिशार्दूला यत्पृष्टं कुम्भयोनिना। पार्वतीनन्दनं भक्त्या हुतभुजश्चरित्रकम् ॥२॥

अगस्त्य उवाच

भूयः श्रोतुमना देव जनोऽयं शङ्करात्मज। सर्वज्ञे त्वयि तद्वार्त्तां कृशानुतपसोद्भवाम्[1] ॥३॥
हिमवच्छिखरे कस्मिन् स्नात्वा तीर्थे तथा पुनः। कथञ्चक्रे तपो वह्निः केनोपदेशितो विभो ॥४॥
देवसेनाग्रणीः स्कन्द तत्फलं प्राप्तवान्कुतः ॥५॥

स्कन्द उवाच

आसीदाङ्गिरसो विप्रो मानसो यः पुरा विधेः। तस्याऽत्मजो महातेजा अग्निर्नाम त्रिषु श्रुतः ॥६॥
महाबली महाप्राज्ञः सर्वशास्त्रविशारदः। रुद्रभक्तिरतोऽजस्रं रुद्रस्मरणभावितः ॥७॥
क्वचित् स[2] श्रुतवान् काले ऋषिभ्यो दहनो मुने। इन्द्रेण चरितं यच्च लब्धा च त्रिदिवेशता ॥८॥
एकदा दिवसे वह्निः पप्रच्छ जनकं मुदा। शक्रेण चरितां वार्तामनम्य पितरं मुहुः ॥९॥

अग्निरुवाच

पूज्याय पितृदेवाय जन्मदात्रे नमो नमः। तात कथञ्च शक्रेण तपस्तप्तं सुदुश्चरम् ॥१०॥
ममैवं वर्त्तते कामस्तपस्तप्तुं तथाविधम्। कस्मिन्स्थाने महाप्राज्ञ कृपाभिरुपदिश्यताम् ॥११॥

---

अध्याय- १३

आग्नेयकोणका दिक्पालका रूपमा अग्निको प्रतिष्ठा

लोमहर्षणले भन्नुभयो – हे आर्य ! हे विप्र ! स्कन्दका मुखारविन्दबाट इन्द्रको अभिषेकसम्बन्धी त्यो पौराणिक घटना सुनेर अगस्त्य अत्यन्त प्रसन्न हुनुभयो र उहाँले फेरि अरू पनि सुन्ने इच्छा गर्नुभयो। हे मुनिशार्दूल ! अगस्त्यले कार्तिक स्वामीसँग जुन अग्निको चरित्र सोध्नुभएको थियो, त्यो सुन्नुहोस् ॥१-२॥

अगस्त्यले भने – हे कार्तिक स्वामी ! तपाईं सर्वज्ञ हुनुहुन्छ। म हजुरबाट अग्निले तपस्या गरेको वृत्तान्त सुन्न चाहन्छु। हे प्रभो ! अग्निले हिमालयको कुन तीर्थमा स्नान गरेर, कसको उपदेश अनुसार कुन शिखरमा तपस्या गरेका थिए? हे स्कन्द ! अग्नि कसका पुत्र हुन् ? उनले त्यो फल कसबाट प्राप्त गरे ? कृपा गरी मलाई बताउनुहोस् ॥३-५॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य ! ब्रह्माजीका अङ्गिरा नामका एक मानसपुत्र थिए। तिनका अग्नि नामले प्रसिद्ध महातेजस्वी पुत्र भए। ती अग्नि सम्पूर्ण शास्त्रका ज्ञाता, पराक्रमशाली र महाज्ञानी थिए। रुद्रभक्तिमा लागेका उनी रुद्रकै स्मरणमा निमग्न हुन्थे ॥६-७॥

हे मुनि ! कुनै दिन अग्निले ऋषिहरूको मुखबाट इन्द्रको तपस्या र त्यसबाट उनलाई प्राप्त भएको स्वर्गको स्वामित्वको बारेमा थाहा पाए। एक दिन अग्निले प्रसन्न चित्तले आफ्ना पितालाई प्रणाम गरेर इन्द्रले गरेको तपस्याको बारेमा सोधे ॥८-९॥

अग्निले भने – पूज्य पितृदेव ! हजुरलाई बारम्बार नमस्कार छ। इन्द्रले कसरी गर्न नसकिने त्यस्तो तपस्या गरेका थिए ? मलाई पनि त्यस्तै प्रकारको तपस्या गर्ने इच्छा छ। हे महाप्राज्ञ ! म कुन ठाउँमा गएर कसरी तपस्या गरूँ ? अनुग्रह गरेर मलाई उपदेश दिनुहोस् ॥१०-११॥

---

१. तप उद्भवाम्, इति न.सं.पु.पाठः। २. क्वश्चित्स, इति न.सं.पु.पाठः।

अङ्गिरा उवाच

ब्रह्मपुत्रो नदश्रेष्ठो ब्रह्मज्वाला नदी वरा। तयोः सुसङ्गमे तीर्थे ब्रह्मत्वं प्राप्यते सुत ॥१२॥
हिमवतो महाशृङ्गे सर्वपुण्यफलप्रदे। नानारत्नसमाकीर्णे तुषारपुञ्जभूषिते ॥१३॥
प्राचीदक्षिणयोर्मध्ये ज्योतिःकूटस्य शेखरे। उत्तरतश्च भस्माद्रेस्तेजोनाम्नि शिलोच्चये ॥१४॥
तस्मिन् तीर्थे सुत स्नात्वा तेजोवच्छेखरे पुनः। संस्थाप्य विधिवल्लिङ्गमेकचित्तेन जप्यताम् ॥१५॥
तारपूर्वं नमोऽन्तञ्च[३] सम्प्रदानपदं ततः। संसारतारकं मन्त्रं सेवेत भोगमोक्षदम्[४] ॥१६॥

स्कन्द उवाच

ततो वैश्वानरो विप्र आकर्ण्य वचनं पितुः। एकचित्तं समाधाय हिमवन्तं ययौ मुदा ॥१७॥
तस्मिन्तीर्थे समाप्लाव्य भस्मलिप्तकलेवरः[५]। भाले त्रिपुण्ड्रकं कृत्वा रुद्राक्षांश्च दधौ पुनः[६] ॥१८॥
समारुह्य ततः शैलं तेजोवन्तं सुशेखरम्। कूटोत्तमे मणिज्वाले पवित्रे हि समाविशत् ॥१९॥
योगासने समासीन ऋजुकाय उदङ्मुखः। विचिन्त्य विधिवद्देवं सर्वदेहगुहाशयम् ॥२०॥
लिङ्गं रत्नमयं स्थाप्य विधिपूर्वं द्विजोत्तमः। अपूजयत्ततो[७] भक्त्या त्रिविधैर्मानसैः पुनः ॥२१॥
दिव्यवर्षशतं साग्रं जजाप मन्त्रमुत्तमम्। आविर्भूतस्ततो देवो व्योम्नस्तेजःकलेवरः ॥२२॥
ततश्चादर्शयद्रुद्रो भक्ताय स्वं कलेवरम्। व्यक्तरूपं समास्थाय चैकाकिने तपस्विने ॥२३॥
सोऽपि ददर्श देवेशं भूतेश्वरं महाविभुम्। वरं दातुं तपःस्थाने ह्यवतरन्तमम्बरात् ॥२४॥
सम्प्रदर्श्य महादेवं व्यक्तरूपं स्मिताननम्। द्विभुजञ्च वृषारूढं हर्षितस्तु तदा शुचिः ॥२५॥

---

अङ्गिरा ऋषिले भन्नुभयो – हे छोरा ! नदहरूमा श्रेष्ठ ब्रह्मपुत्र र नदीहरूमा श्रेष्ठ ब्रह्मज्वाला रहेका छन्, यी दुई नदनदीको सङ्गममा तपस्या गर्नाले ब्रह्मत्व प्राप्त हुन्छ। त्यस तीर्थमा स्नान गरेर तिमीले सम्पूर्ण पुण्य प्रदान गर्ने, हिमालयको शिखरमा स्थित, अनेक रत्न र धेरै तुषारोले विभूषित, पश्चिम र दक्षिण दिशाको बीचमा रहेको ज्योतिकूट र भस्माद्रिको उत्तरतिर अवस्थित तेजनामक गण्डशैलको तेजोवान् शिखरमा विधिपूर्वक शिवलिङ्गको स्थापना गरी एकचित्त भएर जप गर। पहिले ॐ कार अनि नमः, त्यसपछि चतुर्थ्यन्त पद भएको, भुक्ति तथा चाहेको कुरा पुऱ्याइदिने र संसारबाट तार्ने शिवमन्त्रको जप गर ॥१२–१६॥

कार्तिक स्वामीले भन्नुभयो – त्यसपछि आफ्ना पिताको कुरा सुनेर ती ब्राह्मणरूप अग्नि एकचित्त भएर खुसी हुँदै हिमालय पर्वतमा गए। अग्निले त्यस तीर्थमा डुबुल्की मारेर शरीरभरि विभूति घसी निधारमा त्रिपुण्ड्र (तीन धर्के तेर्सो टीका) लगाएर रुद्राक्ष धारण गरे। त्यसपछि अग्नि सुन्दर शिखर भएको तेजोवान् नामक पर्वतमा उक्लिए र मणिहरूको ज्वालाले समन्वित त्यस पर्वतको उत्तम शिखरमा प्रवेश गरे ॥१७–१९॥

त्यहाँ उनले योगासनमा बसेर शरीरलाई सोझो बनाई उत्तरतिर फर्केर सर्वान्तर्यामी अर्थात् सबै प्राणीको शरीररूपी गुफामा बस्ने भगवान् शिवजीको नियमपूर्वक ध्यान गरे। अग्निले विधिपूर्वक रत्नमय लिङ्गको स्थापना गरेर तीनै प्रकारका भक्ति लगाएर शिवजीको मानस पूजा गरे। उनले दिव्य एक सय वर्षसम्म भगवान् शिवजीको उत्तम मन्त्र जपे। त्यसपछि तेजोरूप लिएर भगवान् सशरीर आकाशबाट प्रकट हुनुभयो ॥२०–२२॥

महादेवले एक्लै तपस्यामा संलग्न भक्त अग्निलाई आफ्नो इन्द्रियगम्य साकार स्वरूपको दर्शन दिनुभयो। अग्निले पनि वर दिनका लागि आकाशबाट आउनुभएका देवताहरूका ईश्वर र भूतगणका स्वामी महादेवलाई देखे। साकार रूप लिएर साँढेमा चढ्नुभएका, मुसुमुसु हाँस्नुभएका, दुई हात हुनुभएका महादेवको दर्शन पाएर त्यस समयमा अग्नि अत्यन्त प्रसन्न भए ॥२३–२५॥

---

३. नमश्चान्तम्, इति न.सं.पु.पाठः।
४. सेव्याद् भुक्तीप्सितप्रदम्, इति न.सं.पु.पाठः।
५. विभूत्यालेपितस्तनुः, इति न.सं.पु.पाठः।
६. रुद्राक्षान् धारयेत्पुनः, इति न.सं.पु.पाठः।
७. संपूजयेत्, इति न.सं.पु.पाठः।

परिक्रम्य ततो देवमष्टाङ्गैर्हि ननाम सः। द्राक्षा मधुरया सम्यग् हर्षगद्गदया गिरा ॥२६॥
लोमाञ्चितः समाधाय करपुटं च मूर्द्धनि। भावैस्तैस्त्रिविधैर्युक्तः चकार शूलिनः स्तुतिम्[८] ॥२७॥

अग्निरुवाच

शङ्करेश महादेव जगज्जीवनजन्यक। जीवेश्वर महद्ब्रह्मन् चैतन्यक नमोस्तु ते ॥२८॥
तेजोरूप विरूपाक्ष गङ्गाधर त्रिलोचन। विश्वम्भर विराड्रूप संसारसार ते नमः ॥२९॥
भक्तिभाव्य विभावेश भावाभावविगोचर। भवाभयद भूतेश भवेश्वर नमोऽस्तु ते ॥३०॥
वेदवेदान्ततत्त्वज्ञैरलक्ष्योऽसि महाप्रभो। सर्वदेवेश वागीश वाग्रूपाय नमो नमः ॥३१॥
भवशार्दूलसङ्क्रीडामोहितजीवनोद्धर[९]। भवान्धतमसोपायप्रोद्भूतार्क्क नमोऽस्तु ते ॥३२॥
संवर्त्तके भवापायविलोकनाग्निभालक। इच्छाप्रोद्भूतसंसार स्वेच्छारूप नमोऽस्तु ते ॥३३॥
कालरूप कलातीत कामेश्वर च कामद। कङ्काल कालरूपाऽज कालदेव नमोऽस्तु ते ॥३४॥
विभूतिभूषणोग्रेश अष्टैश्वर्य्यफलप्रद। बहुरूपधर स्थाणो विश्वरूप नमोऽस्तु ते ॥३५॥
कैलाशशिखरावासं तुषारभूतिभूषितम्। गङ्गोज्ज्वलजटाशीर्षं सूर्येन्द्वग्नीक्षणं परम्[९क] ॥३६॥
व्याघ्राजिनपिधानाङ्गं मुण्डमालागलावृतम्। खट्वाङ्गञ्च त्रिशूलञ्च दधानं त्वां नमाम्यहम् ॥३७॥
विमोहितोऽहं तव देव मायया नमामि न त्वां विभवाढ्यगर्वितः।
कायेन वाचा मनसा हृदा च मे क्षमस्व देवेश ममापराधकम् ॥३८॥

---

त्यसपछि उनले परिक्रमा गरी उहाँलाई साष्टाङ्ग प्रणाम गरे र रोमाञ्चित हुँदै शिरमा पुग्ने गरी हात जोडेर त्रिविध भावयुक्त भई सहर्ष गद्गद तथा मधुर बोलीले त्रिशूलधारी महादेवको स्तुति गरे ॥२३-२७॥

अग्निले भने - हे शङ्कर ! हे महादेव ! जगत्लाई जीवन दिने हे जीवका ईश्वर ! हे महाब्रह्मा ! हे चैतन्य ! हजुरलाई नमस्कार छ। हे तेजस्वरूप ! हे विरूपाक्ष ! हे गङ्गाधर ! हे त्रिलोचन ! हे विश्वम्भर ! हे विराट् ! हे ईश्वर ! हे संसारका सार ! हजुरलाई नमस्कार छ। हे भक्तिभाव्य ! हे कारणका मालिक ! हे भाव र अभावको बीचमा स्थित ! हे भूतगणका अधिपति ! हे संसारका स्वामी ! हजुरलाई नमस्कार छ। हे महाप्रभो ! हजुर वेद तथा वेदान्तका तत्वज्ञाताहरूले पनि जान्न नसकिने हुनुहुन्छ। हे सम्पूर्ण देवताका ईश्वर ! हे वागीश ! वाक्स्वरूप हजुरलाई नमस्कार छ। हजुर बाघजस्तो डरलाग्दो संसारभित्र भोगक्रीडामा मोहित जीवजगत्को उद्धार गर्नुहुन्छ। संसाररूपी घोर अन्धकारलाई नाश गर्न प्रकट हुनुभएका हे सूर्यस्वरूप भगवन् ! हजुरलाई नमस्कार छ ॥२८-३२॥

प्रलयकालीन संसारलाई संहार गर्न निधारमा अग्नि धारण गर्ने, इच्छा अनुसार संसारको सृष्टि गर्ने र इच्छा अनुसार रूप ग्रहण गर्ने हजुरलाई नमस्कार छ। हे कालरूप ! हे कालातीत ! हे कामद ! हे कामेश्वर ! हे कङ्काल ! हे कालरूप ! हे अज ! हे कालदेव ! हजुरलाई नमस्कार छ। हे विभूतिभूषण ! हे ईश्वर ! हे अष्टैश्वर्यफलदाता ! हे बहुरूपधर ! हे स्थाणु ! हे विश्वरूप ! हजुरलाई नमस्कार छ। हिउँको खरानी घस्ने, कैलासको शिखरमा बस्ने, गङ्गाजीले गर्दा उज्यालो स्वरूप भएका, जटयुक्त शिरले सुशोभित हुनुभएका र सूर्य, चन्द्र तथा अग्निरूप तीन नेत्र धारण गर्ने हजुरलाई नमस्कार छ। बाघको छालाले शरीर ढाक्ने, घाँटीमा मुण्डमाला लगाउने, खट्वाङ्ग र त्रिशूल धारण गर्ने हजुरलाई नमस्कार छ। हे देव ! म हजुरको मायाले विमोहित भएको छु। धनको मदले मत्त भएर मैले कहिल्यै पनि शरीर, हृदय र वचनले मात्र पनि हजुरको सेवा गरिनँ। हे देवेश ! मेरा यी अपराध क्षमा गर्नुहोस् ॥३३-३८॥

---

८. त्रिविधैर्भावयुक्तः स स्तुतिञ्चकार शूलिने, इति न.सं.पु.पाठः।
९. जीवनोद्धृतः, इति न.सं.पु.पाठः।
९क. स कैलाशशिखरेवासिन्, इति न.सं.पु.पाठः।
९ख. सूर्यन्द्वनीक्षण नमः, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

ततो महेश्वरोऽगस्त्य समाकर्ण्य स्तवोत्तमम्। हर्षितवान् तदा तस्मै प्रोफुल्ललोचनो भृशम् ॥३९॥

बभाषे वचनं भूयो वह्नये स्तुतिहर्षितः। तपस्विने महातेजा वरं दातुं घटोद्भव ॥४०॥

ईश्वर उवाच

स्तुतोऽहं स्तवनैर्विप्र त्वन्मुखान्निसृतोत्तमैः। प्रेक्ष्य तपः कठोरं ते सुदुष्करं सुरैरपि ॥४१॥

इदानीं ते वरं दास्ये भक्ताय च तपस्विने। वरं वरय धर्मज्ञ यत्त्वं वाञ्छसि साम्प्रतम् ॥४२॥

अग्निरुवाच

यदि दास्यसि मे देव सर्ववरोत्तमं वरम्[१०]। तव भक्तिरतो नित्यं त्वां पूजये सुनिश्चलम् ॥४३॥

त्वत्स्मरणे सुनिष्ठा च जिह्वायास्ते स्तवोत्तमे। इदमेव वरं काङ्क्षे तन्मे विभो कृपां कुरु[११] ॥४४॥

रुद्र उवाच

बहुभक्तिरतायाऽद्य ददामीदं वरं शृणु। भवतु ते महाशक्तिर्भूयादैश्वर्य्यमार्यता ॥४५॥

भविता लोकसाक्षी त्वं सर्वभुक् सन्ततं पुनः। विना त्वां कर्मजातं तत्[१२] लोकानां निष्फलं भवेत् ॥४६॥

त्वन्मूर्त्तिभिरयं लोको नूनं[१३] दग्धो भविष्यति। हविर्भुक्क्रतुरूपस्त्वं सर्वकर्मप्रसाधकः ॥४७॥

सर्वदेवमयो भूयाः सर्वेप्सितफलप्रदः। प्राचीदक्षिणयोर्मध्ये मेरोः सानुनि तिष्ठसि[१४] ॥४८॥

अद्यप्रभृति चाग्ने त्वं वत्स दिगीश्वरो भव। दिशं पालय नित्यं वै सर्वकर्त्ता च शाश्वतः ॥४९॥

यः पठति शुचिर्भूत्वा दिव्यमग्निस्तवं सदा। सर्वपापैर्विमुक्तोऽसौ तव लोकं प्रगच्छति ॥५०॥

---

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य ! अग्निले गरेको यस्तो उत्तम स्तुति सुनेर ठूला-ठूला आँखा पार्दै महादेव उनीसँग अत्यन्त प्रसन्न हुनुभयो। हे अगस्त्य मुनि ! स्तुतिबाट प्रसन्न हुनुभएका महातेजस्वी महादेवले तपस्वी अग्निलाई वर दिने विचारले भन्नुभयो ॥३९–४०॥

ईश्वरले भन्नुभयो – हे अग्निरूप ब्राह्मण ! तिम्रो मुखबाट निस्केका उत्तम स्तोत्रहरूद्वारा मेरो स्तुति भयो। मैले देवताहरूले पनि गर्न नसक्ने तिम्रो कठोर तपस्या देखें। त्यसैकारण म भक्त र तपस्वी तिमीलाई वर दिन्छु। हे धर्मज्ञ ! अब तिमीले जे चाहेका छौ, त्यो वर माग ॥४१–४२॥

अग्निले भने – हे महादेव ! यदि मलाई सबैभन्दा उत्तम वर दिनुहुन्छ भने नित्य हजुरको भक्तिमा मेरो प्रेम बढोस्, दृढ भएर सधैं हजुरको अर्चना गर्न पाऊँ। हे प्रभो ! हजुरको स्मरणमा नै मेरो निष्ठा बढोस्, हजुरको स्तुतिमा मेरो जिब्रो सधैं लागिरहोस्। म यही वर चाहन्छु, ममाथि कृपा गर्नुहोस् ॥४३–४४॥

महादेवले भन्नुभयो – मेरो प्रगाढ भक्तिमा निमग्न भएका तिमीलाई आज म यो वर दिन्छु, सुन। हे आर्य ! तिम्रो ठूलो शक्ति होस् र तिमीलाई ऐश्वर्य पनि प्राप्त होस्। तिमी लोकका साक्षी हुनेछौ, तिमी सर्वदा सर्वभक्षी हुनेछौ। यस्तै तिमीविना गरिएको लोकको सम्पूर्ण कर्म निष्फल हुनेछ। प्रलयकालमा तिम्रो मूर्तिद्वारा यो संसार डढ्नेछ। तिमीले हवि भक्षण गर्ने यज्ञस्वरूप भएर सम्पूर्ण कर्म सिद्ध गराउनेछौ।तिमी सकल देवतास्वरूप भएर सबैलाई मनमा लागेको फल दिन सक्ने बन। तिमी पूर्व र दक्षिणको बीचको सुमेरुको आग्नेय टाकुरामा रहनेछौ। हे बाबु अग्नि ! आजदेखि तिमी दिक्पाल भएर आग्नेय दिशाको अधिपति बन। सधैं त्यहाँकोहर्ता र कर्ता भएर सबैको पालन गर। जसले पवित्र भएर यो दिव्य अग्निस्तोत्र पाठ गर्नेछ, त्यो व्यक्ति सम्पूर्ण पापबाट मुक्त भएर तिम्रो लोकमा जानेछ। ।४६–५०॥

---

१०. सर्ववरस्मनुत्तमम्, इति न.सं.पु.पाठः।
११. कृपय भो विभो, इति न.सं.पु.पाठः।
१२. सर्वकर्मण्यं, इति न.सं.पु.पाठः।
१३. हेतुर्लोक, इति न.सं.पु.पाठः।
१४. सानौ प्रतिष्ठसि, इति न.सं.पु.पाठः।

पीडायां सङ्कटे वापि क्रूरोग्रग्रहपीडने। सङ्ग्रामे ते भयोद्भूते त्वन्तं रक्षसि पाठकम् ॥५१॥
यः पठेत्सततं धीरः स्तवराजं मनोहरम्। सर्वपापैर्विनिर्मुक्तस्तव लोके महीयते ॥५२॥

स्कन्द उवाच

एवं महद्वरं दत्त्वा निर्जनाय तपस्विने। कुम्भयोने महादेवस्तिरोधानङ्गतोऽम्बरे ॥५३॥
ततो देवगणाः सर्वे गन्धर्वाप्सरसां गणाः। देवर्षयस्तथा सिद्धा नारदश्च बृहस्पतिः ॥५४॥
समागत्य महाकूटे तेजोनामशिलोच्चये। मुमुदुश्च तमालोक्य लब्धवरं तपस्विनम् ॥५५॥
बृहस्पतिमुखा देवाः सिषिचुर्दहनं मुदा। ब्रह्मज्वालासुतीर्थस्य प्रादाय जलमुत्तमम् ॥५६॥
हिरण्यकलशैर्विप्र मन्त्रजप्तैः पवित्रकैः। वासांसि[१५] परिधायैवं गुरुणा चर्च्चितस्तथा ॥५७॥
नेदुर्व्योम्नि च[१६] नादाश्च गन्धर्वपतयो जगुः। देव्यश्च चिक्षिपुर्लाजान् ववृषुः[१७] कुसुमानि च ॥५८॥
अग्नये च तदा पत्नीं स्वाहानाम्नीं घटोद्भव। ददुर्देवास्ततो वह्निस्तामुद्वाह यथाविधि ॥५९॥
ततो देवाः सगन्धर्वाः पुरोधायाग्निदैवतम्। प्राचीदक्षिणयोर्मध्ये मेरोर्जग्मुश्च सत्वरम् ॥६०॥
अग्निं संस्थाप्य लोकेशं तत्कूटे कुम्भसम्भव। सम्बोध्य विधिवत्पौत्रं ब्रह्मलोकं ययौ मुदा ॥६१॥
तथाविधं सगन्धर्वाः देवाः जग्मुः स्वकं स्वकम्। स्थानं वह्निञ्च सम्पूज्य विधिवत्तं मुहुर्मुहुः ॥६२॥
स्नाति यश्चाग्नितीर्थे यः[१८] सकृदपि घटोद्भव। अग्निष्टोमफलं प्राप्य वह्निलोके महीयते ॥६३॥

तदादि वह्निर्मुमुदे तथैव यथैव शक्रस्य भवेत्प्रमोदः।
यमः समाकर्ण्य शुचेस्तपो वै चकार तत्सोऽपि कठोरचेताः ॥६४॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे अग्निदिक्पालसिद्धिर्नाम त्रयोदशोऽध्यायः ॥१३॥

---

दुःख परेको बेलामा, सङ्कट आइपरेको अवस्थामा अथवा क्रूर ग्रहले पीडा दिएको बेलामा, लडाईंमा र आगलागीको डर भएको स्थितिमा तिमीले यो स्तोत्र पाठ गर्नेको रक्षागर्नेछौ। जसले धैर्य लिएर यो सुन्दर स्तवराज पाठ गर्दछ, त्यो सबै पापबाट मुक्त भएर तिम्रो लोकमा पूज्य हुनेछ ॥४८-५२॥

कार्तिक स्वामीले भन्नुभयो - हे अगस्त्य मुनि ! यसरी एकान्त स्थलमा तपस्यारत ती तपस्वी अग्निलाई अत्युत्तम वरदान दिएर महादेव आकाशमा अन्तर्धान हुनुभयो। त्यसपछि गन्धर्व, अप्सरा, देवर्षि, सिद्ध, नारद, बृहस्पति आदि सबै देवताहरू त्यो उच्च शिखर भएको तेजवान् नामक पर्वतमा जम्मा भए। मुनिहरू पनि त्यस स्थानमा वरदान प्राप्त गरेका ती तपस्वी अग्निलाई देखेर प्रसन्न भए ॥५३-५५॥

मन्त्र जपेर पवित्र बनाइएका सुनका घडाहरूमा ब्रह्मज्वाला नामक नदीबाट तीर्थजल ल्याई बृहस्पति आदि देवताले अग्निको अभिषेक गरे, वस्त्रहरू लगाइदिएर बृहस्पतिले उनको पूजा गरे। अभिषेक गर्ने समयमा आकाशमा बाजाहरू बजे, गन्धर्वहरूले गाए, देवीहरूले लाजा छरे र फूलको वृष्टि भयो ॥५४-५८॥

हे अगस्त्य मुनि ! त्यस समयमा देवताहरूले अग्निलाई स्वाहा नाम गरेकी कन्या दिए। अग्निले पनि स्वाहासँग विधिपूर्वक विवाह गरे। त्यसपछि सबै देवता तथा गन्धर्वहरू अग्निलाई अघि लगाएर सुमेरु पर्वतको पूर्व र दक्षिणमा पर्ने शिखरमा गए ॥५९-६०॥

हे अगस्त्य मुनि ! सबै ब्रह्मादि देवताहरूले त्यस शिखरमा पुगेर त्यहाँ अग्निलाई विदिक्पालका रूपमा स्थापित गरे। त्यसपछि आफ्नो नाति अग्निलाई राम्रोसँग सम्झाएर प्रसन्न हुँदै ब्रह्माजी ब्रह्मलोकतर्फ जानुभयो। त्यसैगरी सबै देवता तथा गन्धर्वहरू पनि विधिपूर्वक अग्निलाई बारम्बार पूजा गरेर आ-आफ्ना स्थानमा गए ॥६२॥

हे अगस्त्य मुनि ! जसले अग्नितीर्थमा एकपटक मात्रै भए पनि स्नान गर्नेछ, त्यसले अग्निष्टोम यज्ञ गरेको फल प्राप्त गरेर अग्निलोकमा सम्मानित हुन पाउनेछ। अघि इन्द्रलाई जस्तो खुसी भएको थियो, त्यस दिनदेखि अग्निलाई पनि त्यस्तै आनन्द भयो। अग्निले तपस्या गरेको सुनेर यमराजले पनि कठोर मन बनाई तपस्या गरे ॥६४॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गत हिमवत्खण्डमा अग्निको विदिक्पालसिद्धि नामक तेह्रौं अध्याय पूर्ण भयो।

---

१५. वासोभिः, इति न.सं.पु.पाठः।
१६. च, इति न.सं.पु.पाठः।
१७. ववषुः, इति न.सं.पु.पाठः।
१८. स्नायते चाग्नितीर्थे, इति न.सं.पु.पाठः।

# चतुर्दशोऽध्यायः

दक्षिणदिशो दिक्पालरूपेण यमस्य प्रतिष्ठा

अगस्त्य उवाच

प्रोक्तं मे दुश्चरं तप्तं तपो यमेन रुद्रज। कस्मिन् तीर्थे च शृङ्गे वा कोऽसौ यमो महाबलः ॥१॥
तेपे पुरा महासेन ! यमश्चाऽसौ कथं पुनः। श्रोतुमिच्छाम्यहं त्वत्तस्तत्सर्वं कथयस्व मे ॥२॥

स्कन्द उवाच

रुद्रतेजा महाभानुः पूर्वोक्तस्ते महाविभुः। तस्याऽपत्यं त्रयो देवा मनुर्यमः शनैश्चरः ॥३॥
स वै सर्वविदार्य्यश्च सर्वशास्त्रेषु पारगः। सर्वधर्मरतोऽजस्रमधर्मेषु पराङ्मुखः ॥४॥
संयमात् सर्वकार्येषु[1] तस्माद्यम, इति श्रुतः। निर्द्वन्द्वो निःस्पृहो दान्तो निर्विकारः सदा शुचिः ॥५॥
तस्माल्लोकैर्यमः प्रोक्तः समदृष्टिश्च प्राणिषु[2]। सत्यवादी च कालज्ञो धर्माधर्मेषु निर्मितः ॥६॥
विष्णुभक्तिरतो नित्यं शिवपूजनतत्परः। अद्वैतवादी मधुवाग् यज्ञनिष्ठश्च दायकः ॥७॥
सूर्यभक्तिरतोऽगस्त्य ह्यतिथिपूजकस्तथा। कदाचिद्दिवसे वार्त्तां पृच्छति स्म रविं यमः ॥८॥
अग्निना यत्तपस्तप्तं श्रुत्वा देवमुखान्मुने।

यम उवाच

तात कथं तपस्तप्तमग्निना च महात्मना ॥९॥
ममाऽपि विद्यते कामस्तपस्तप्तुं सुनिश्चितम्। लोकसाक्षिन् महातेज ह्यनुज्ञां हि प्रयच्छ मे ॥१०॥
यस्माच्च प्राप्यते सिद्धिर्नाऽऽज्ञां विना चरे तव ॥

---

## अध्याय- १४

दक्षिणदिशाको दिक्पालका रूपमा यमको अभिषेक

अगस्त्य ऋषिले भन्नुभयो – हे कार्तिक स्वामी ! तपाईंले मसँग यमले कठोर तपस्या गरे भनेर भन्नुभयो। ती महाबली यम को थिए ? उनले कहिले कुन तीर्थमा, कुन टाकुरामा कसरी तपस्या गरेका थिए? त्यो सबै कुरा म तपाईंबाट सुन्न चाहन्छु, मलाई बताइदिनुहोस् ॥१–२॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! महादेवको तेजस्वरूप महाविभु सूर्य भनेर अघि मैले जुन कुरा तपाईंलाई बताएँ, तिनै सूर्यका मनु, यम र शनैश्चर गरी तीन छोरा थिए। सम्पूर्ण कुरा जान्ने उनीहरू सबै शास्त्रमा पारङ्गत थिए र धर्ममा रत भएका कारण अधर्ममा कहिल्यै लागेका थिएनन्। सम्पूर्ण कर्ममा संयमपूर्वक लागेका हुनाले ती यम भनेर प्रख्यात भए। तिनका प्रतिस्पर्धी कोही थिएनन्, कुनै कुरामा उनको रुचि थिएन। उनी विकाररहित र पवित्र थिए। जीवधारी जातिलाई एकनासले हेर्ने हुँदा पनि तिनलाई यम भनिएको हो। सत्यवक्ता यमले समयको सबै कुरा थाहा पाउँथे र धर्म तथा अधर्मलाई पनि छुट्याउन सक्दथे। विष्णुको भक्तिमा निरन्तर लागेका उनी शिवजीको पूजा गरिरहन्थे। जीव र ब्रह्म दुवैलाई एउटै स्वरूप मान्ने उनको यज्ञ तथा दानमा निष्ठा थियो ॥३–७॥

हे अगस्त्य मुनि ! आफ्ना पिता सूर्यको भक्तिमा रत रहने यमले अतिथिको पनि सत्कार गर्दथे। कुनै दिन उनले देवताका मुखबाट अग्निले जुन तपस्या गरेर विदिक्पाल बने त्यसका बारेमा सुने पछि आफ्ना पिता सूर्यसँग त्यसबारे जिज्ञासा राखे ॥८½॥

हे भगवन् ! अग्निले तपस्या गरे भन्ने कुरा हजुरको मुखबाट मैले सुनें, महात्मा अग्निले तपस्या कसरी गरे ? बताउनुहोस्। मलाई पनि त्यस्तै तपस्या गर्ने इच्छा लागेको छ। हे लोकसाक्षी ! हे महातेज ! स्वीकृतिविना गरेको तपस्याबाट सिद्धि प्राप्तनहुने भएकाले मलाई पनि तपस्याका लागि स्वीकृति दिनुहोस्, ॥८–१०॥

---

१. संयमः सर्वकर्मषु, इति न.सं.पु.पाठः।
२. जीविषु, इति न.सं.पु.पाठः।

सूर्य उवाच

अग्निना यत्तपस्तप्तं तन्मया कथ्यतेऽधुना ॥११॥

शृणु पुत्र महाज्ञानं यस्मात्संलभ्यते परम्। उपदेशं समादाय पितुर्ययौ हिमालयम् ॥१२॥

भस्मोद्धूलनदेहोऽसौ रुद्राक्षांश्च दधार च। तपश्चकार धर्मज्ञस्ततो वैश्वानरोऽमरः ॥१३॥

तपोऽन्ते सुवरं लब्ध्वा दिक्पालश्चाऽभवद् ध्रुवम्। तथाविधं त्वया वत्स तप्यतां दुश्चरं तपः ॥१४॥

यदीच्छस्यात्मनः[३] सिद्धिं हिमवद्दक्षिणे दिशि। नीलकण्ठस्य पूर्वस्मादुमाकुण्डस्य दक्षिणे[४] ॥१५॥

सिद्धकूटः, इति ख्यातस्तत्र वै तप्यतां सुत। षडक्षरो महामन्त्रो तारपूर्वः प्रजप्यताम् ॥१६॥

संस्थाप्य विधिवल्लिङ्गं भक्त्या चाऽऽराधयेश्वरम्। सिद्धरसा नदी श्रेष्ठा योमाकुण्डोद्भवाऽऽपगा ॥१७॥

तयोर्य्योगे सिद्धतीर्थे स्नात्वाऽद्रौ च गिरिं व्रज[५]। तत्र स्नात्वा दिवं याति सदेहो नात्र संशयः ॥१८॥

उमाकुण्डे नरः स्नात्वा सिद्धो भवति तत्क्षणात्।

स्कन्द उवाच

श्रुत्वा पथ्यं पितुर्वाक्यं सर्ववागुत्तमोत्तमम् ॥१९॥

प्रहर्षितो महाप्राज्ञः सर्वाङ्गलोमहर्षणः। वाचा गद्गदया विज्ञः स्तुतिञ्चकार भास्वतः ॥२०॥

विधाय चाऽञ्जलिं मूर्ध्नि परिक्रम्य पुनः पुनः।ॐ नमोऽस्तु भानवेऽजाय जगतां लोचनाय वै ॥२१॥

सृष्टिस्थितिस्वरूपाय संहारक नमोऽस्तु ते। ज्ञानाय ज्ञानरूपाय शाश्वतज्ञानदाय च[६] ॥२२॥

ज्योतीरूपाय देवाय ज्योतिषां पतये नमः। एवं स्तुत्वा स धर्मज्ञः पितरञ्च पुनः पुनः ॥२३॥

---

सूर्यनारायणले भन्नुभयो – अग्निले जस्तो तपस्या गरेका थिए, त्यसको बारेमा म बताउँछु, सुन। यसबाट तिमीलाई ठूलो ज्ञान प्राप्त हुनेछ। पिताको उपदेश लिएर अग्नि हिमालयमा गए। उनले शरीरभरि खरानी घसी रुद्राक्षको माला लगाएर तपस्या गरे। तपस्या सकिएपछि उत्तम वर पाएर उनी दिक्पाल बने। बाबु तिमी पनि सिद्धि प्राप्त गर्न चाहन्छौ भने त्यसैगरी कठोर तपस्या गर। हिमालयको दक्षिण भागमा नीलकण्ठदेखि पूर्वतिर अनि उमाकुण्ठदेखि दक्षिणपट्टि सिद्धकूट भन्ने प्रसिद्ध स्थान छ। हे बाबु ! तिमी त्यहीँ गएर तपस्या गर, ॐकारसहितका छवटा अक्षर भएको शिवजीको महामन्त्र जप गर र विधिपूर्वक भगवान् शिवको लिङ्ग स्थापना गरेर पूजा गर। उमाकुण्डबाट निस्किएको सिद्धरसा भन्ने श्रेष्ठ नदी छ। ती दुईको सङ्गमस्थल सिद्धतीर्थमा स्नान गरेर तिमी पर्वतमा जाऊ। त्यहाँ स्नान गर्नाले यही शरीर लिएर स्वर्ग जान पाइन्छ, यस कुरामा सन्देह छैन। उमाकुण्डमा स्नान गर्ने मानिस तत्कालै सिद्ध हुन्छ ॥११-१८½॥

कार्तिक स्वामीले भन्नुभयो – आफ्ना पिताको यस्तो हितकारक वचन सुनेर अत्यन्त प्रसन्न भएका, श्रेष्ठ बुद्धिमान् यमराजले सारा आङ जुरुङ्ग पार्दै शिरमा अञ्जलि बाँधेर बारम्बार परिक्रमा गर्दै मधुर स्वरले सूर्यको स्तुति गरे ॥१९-२०½॥

संसारका दृष्टि भएका अजन्मा श्रीसूर्यलाई नमस्कार छ। सृष्टि, स्थिति र संहारस्वरूप हजुरलाई नमस्कार छ। ज्ञान, ज्ञानस्वरूप र नित्य ज्ञानदाता हजुरलाई नमस्कार छ। ज्योतिस्वरूप भएका देवता तथा ग्रह, नक्षत्र आदिका स्वामी हजुरलाई नमस्कार छ। यसरी स्तुति गरेर धर्मका मर्मज्ञ यमराजले आफ्ना पिता सूर्यदेवलाई बारम्बार नमस्कार गरी हिमालयको शिखरमा गए ॥२१-२३½॥

---

३. यदीच्छेदात्मनः, इति न.सं.पु.पाठः।

४. पूर्वस्मादुमायाः कुण्डदक्षिणे, इति न.सं.पु.पाठः।

५. वज्रेत्, इति न.सं.पु.पाठः।

६. ज्ञानप्रदे च शाश्वते, इति न.सं.पु.पाठः।

प्रणम्य शिरसा देवं हिमवच्छिखरं ययौ। ततो यमः समागत्य सिद्धतीर्थे जलोत्तमे ॥२४॥
सिद्धैः प्रसेवितेऽगस्त्य स्नानञ्चक्रे यथाविधि। ततः स्नात्वा यमः स्वच्छो भूत्या देहे प्रलेपितः ॥२५॥
ललाटे संविधायाऽऽद्यं त्रिपुण्ड्रकं सुशोभनम्। रुद्राक्षानादधे विद्वान्[७] देशे देशे यथाविधि ॥२६॥
ददौ दायं मुनिभ्यश्च यथाविभवविस्तरम्। दत्त्वा दायाँस्ततः सौरी रुरोह सिद्धपर्वतम् ॥२७॥
तत्र शृङ्गे महापुण्ये सिद्धलोकप्रसेविते। तुषारसङ्कुले दिव्ये सर्वदेवमनोहरे ॥२८॥
बहुरत्नसमाकीर्णे सिद्धरससमुद्भवे। दिव्यासने समासीन ऋजुकाय उदङ्मुखः ॥२९॥
विचिन्त्य ज्योतिषां पुञ्जं मनःपद्मे सकेशरे। वैदूर्य्यमणिसम्भूतं लिङ्गं संस्थाप्य वै यमः ॥३०॥
रुचिरे मण्डपे[८] दिव्ये पञ्चसूत्रैः सुनिर्मिते। तीर्थतोयैः सुसंस्नाप्य[९] विभूतिभिः पृथक् ततः ॥३१॥
गन्धोत्तमैर्दुकूलैश्च धूपैर्दीपैस्तथाऽशनैः। अनन्यभावसंयुक्त एकचित्तश्च मन्त्रवित् ॥३२॥
ततोऽपूपुजदाद्येशं सर्वभूतगुहाशयम्। जजाप मनसा नूनं मनुं यमो महामतिः ॥३३॥
आधाय शङ्करं देवं नासाग्रे तं निरीक्ष्य वै। दिव्यवर्षशतं साग्रमेकचित्तः समाहितः ॥३४॥
ततो वर्षावसाने वै आविर्भूतो महाविभुः। ज्योतिर्भूतो महातेजास्तेजसा भासयन् दिशः ॥३५॥
वरं दातुं स्वभक्ताय चाऽवततार पुष्करात्। विलोक्य तपसा पूर्णं क्लिश्यमानञ्च मौनिनम् ॥३६॥
दिव्यरूपं समाधाय दर्शयामास तं स्वकम्। प्रहृष्टवान्महादेवस्तपसा तस्य मौनिनः ॥३७॥
प्रव्यक्तरूपवान् भूत्वा सर्वतेजोमयो विभुः।

---

त्यसपछि सूर्यपुत्र यमराज हिमालयको टकुरामा गए र उत्तम जलले युक्त, सिद्धहरूद्वारा सेवित सिद्धतीर्थमा पुगेर विधिवत् स्नान गरे। स्नान गरिसकेपछि उनले आफ्नो शरीरमा सफा विभूति लेपन गरे, पहिले निधारमा त्रिपुण्ड्र लगाए, त्यसपछि शरीरका प्रत्येक ठाउँमा विधिपूर्वक रुद्राक्ष धारण गरे ॥२४-२६॥

त्यसपछि ऋषिमुनिहरूलाई आफ्नो सामर्थ्य अनुसारको दान दिएर सूर्यपुत्र यमले सिद्धपर्वतमा आरोहण गरे। त्यहाँ उत्तम पुण्य दिने, सिद्धगणद्वारा सेवित, हिउँ नै हिउँले ढाकिएको, सम्पूर्ण देवताको उपस्थितिले सुशोभित भएको, अनेक रत्नहरूले युक्त, सिद्धरसा नदी निस्किएको टकुरामा दिव्य उत्तरतिर फर्की आसनमा बसेर उनले शरीरलाई सिधा बनाए ॥२७-२९॥

बसेपछि उनले केशरयुक्त हृदयकमलमा रहेको ज्योतिको पुञ्जलाई ध्यान गरेर एउटा दिव्य चौकी बनाई पाँचसूते डोराले बेह्रिएको वैदूर्यमणिको शिवलिङ्ग स्थापना गरेर तीर्थको जल र विभूतिहरूले छुट्टाछुट्टै स्नान गराई उत्तम उत्तम चन्दन, धूप, बत्ती, नैवेद्य तथा वस्त्रहरू चढाएर एकचित्त भई अनन्यभावले मन्त्रज्ञ यमराजले सारा प्राणीका हृदयको गुफामा रहने आदि शङ्कर भगवान्को अर्चना गरे। महामति यमले भगवान् शङ्करलाई नाकको टुप्पामा राखेर त्यसैमा दृष्टि दिँदै एकचित्त भई ध्यान गरेर दिव्य एक सय वर्षसम्म मनमनै शिवजीको मन्त्र जप गरे ॥३०-३४।

त्यसपछि वर्षाको अन्त्यमा महातेजस्वी महाप्रभु महादेव ज्योतिस्वरूप लिएर दशै दिशालाई प्रकाशित बनाउँदै त्यसै स्थानमा प्रकट हुनुभयो। महादेव आफ्ना भक्त यमलाई वर दिन भनेर आकाशबाट तल झर्नुभयो। तपस्या पूर्ण भएका, शरीर सुकेका र मौन व्रत धारण गर्ने उनलाई देखेर उहाँले आफ्नो रूप देखाउनुभयो। यमको कठोर तपस्या देखेर अत्यन्त प्रसन्न हुनुभएका व्यापक तेजोमूर्ति भगवान् शिवजीले उनलाई आफ्नो स्पष्ट स्वरूपको पनि दर्शन दिनुभयो ॥३५-३७½॥

---

७. रुद्राक्षान् धारयेद् विद्वान्, इति न.सं.पु.पाठः। ८. निर्मिते वेदिके, इति न.सं.पु.पाठः। ९. स्थाप्य, इति न.सं.पु.पाठः।

दर्शयामास भूतेशं तैजसं रूपमुत्तमम्[१०] ॥३८॥
त्रिलोचनं चतुर्बाहुं चन्द्रभालं कपालिनम् । प्रसन्नवदनं रुद्रं हर्षपूर्णञ्च शूलिनम् ॥३९॥
दधानं डमरुं मालां व्याघ्रचर्मोत्तरीयकम् । सम्प्रेक्ष्य देवदेवेशं भावभक्त्या ननाम सः[१०क] ॥४०॥
स्तवं चकार धर्मात्मा कृतप्रदक्षिणो मुदा ।

यम उवाच

ॐ नमः शिवाय देवाय शान्तायोग्रेश्वराय च ॥४१॥
ज्योतिष्पुञ्जशरीराय[११] तेजोरूपाय वै नमः । अलक्ष्याय च लक्ष्याय मृगलाञ्छनमौलिने ॥४२॥
त्रिनेत्राय चतुर्दोष्णे शूलहस्ताय वै नमः । खट्वाङ्गं डमरुं मालां दधानाय नमो नमः ॥४३॥
नमो भस्माङ्गरागाय रुद्राक्षमालिने नमः । बहुरूपाय रुद्राय चानन्तरूपिणे नमः ॥४४॥
अनन्तशक्तिसङ्घाय ह्यनन्तफलदाय च । नमो दयानिधानाय दयारूपाय ते नमः ॥४५॥
दान्ताय दानरूपाय दायकाय नमो नमः । सर्वभूतेशदेवाय दम्भहन्त्रे हराय च ॥४६॥
अनादिदेवदेवाय शङ्कराय नमो नमः । पशुपाशविमुक्ताय त्रिरूपाय नमो नमः ॥४७॥
ज्ञानप्रदाय भव्याय मृत्युञ्जयाय वै नमः । अनुपमशरीराय विश्वरूपाय वै नमः ॥४८॥
विश्वेश्वराय भीमाय देहस्थाय नमो नमः । नीलकण्ठाय शर्वाय पिङ्गलनेत्रचारवे ॥४९॥
निद्धूर्तमलपङ्काय शाश्वताय नमो नमः । महाभोगीन्द्रहाराय ह्यजायामितमूर्त्तये ॥५०॥
पराय परमेशाय सर्वप्रणत ते नमः । भक्तवत्सल देवेश भक्तिहीनस्य देहिनः ॥५१॥
क्षन्तव्यो मेऽपराधश्च वाग्विभवोद्भवे स्तवे[११क] ।

---

त्यसपछि यमराजले अत्यन्त तेजिला तीन आँखा, चार हात र निधारमा चन्द्रमा भएका, खप्पर लिएका, हँसिलो अनुहार भएका, त्रिशूल, डमरु र जपमाला हातमा लिएका, बाघको छाला पहिरिएका भगवान् शङ्करलाई देखे र विभिन्न किसिमले प्रणाम गरे। त्यसपछि धर्मात्मा यमले उहाँको प्रदक्षिणा गरेर स्तुति गरे ॥३८-४०½॥

यमराजले भने – शान्तस्वरूप हुनुभएका उमापति शिवजीलाई नमस्कार छ। ज्योतिपुञ्जको शरीरले युक्त तेजस्वरूप हजुरलाई नमस्कार छ। लक्ष्य भईकन पनि अलक्ष्य हुनुभएका, शिरमा चन्द्रमा धारण गर्नुहुने, तीन आँखा र चार हात भएका तथा त्रिशूल हातमा लिने हजुरलाई नमस्कार छ। खट्वाङ्ग, डमरु र माला धारण गर्ने हजुरलाई बारम्बार नमस्कार छ। भस्म लेपन गर्नुहुने, रुद्राक्षको माला धारण गर्नुहुने, अनेक स्वरूप लिनुहुने र अनन्त रूप हुनुभएका हजुरलाई बारम्बार नमस्कार छ। अपरिमित शक्तिले सुहाउनुभएका, अनन्त फल प्रदान गर्नुहुने, दयाका खानी र दयामूर्ति हजुरलाई नमस्कार छ। इन्द्रियमाथि विजय गर्ने, दानस्वरूप, दाता, सम्पूर्ण प्राणीका देवता र दम्भलाई नाश गर्ने भगवान् शिवलाई नमस्कार छ। हे अनादि देव शङ्कर ! हजुरलाई नमस्कार छ। पशुपाशबाट मुक्त तीन रूप भएका हजुरलाई नमस्कार छ। ज्ञान दिने, कल्याणकारी र मृत्युञ्जयस्वरूप हजुरलाई नमस्कार छ। अनुपम शरीर ग्रहण गर्नुहुने विश्वरूप हजुरलाई नमस्कार छ ॥४१-४८॥

विश्वका अधिपति, भयङ्कर तथा शरीरमा स्थित हुने हजुरलाई नमस्कार छ। नीलो घाँटी भएका, कैलो आँखा भएर पनि सुन्दर देखिने, सम्पूर्ण पापबाट रहित भएका शाश्वत भगवान् शिवलाई नमस्कार छ। वासुकि नागको हार लगाउनुभएका, जन्मरहित भईकन पनि अनेक रूप ग्रहण गर्नुहुने, सबैद्वारा मानिनुभएका, परब्रह्म परमेश्वर हजुरलाई नमस्कार छ। भक्तलाई अनुग्रह गर्ने हे महादेव ! मजस्तो भक्तिहीन प्राणीको वचनबाट उत्पन्न भएको स्तुतिभित्र पर्न गएको अपराधलाई क्षमा गर्नुहोस् ॥४८-५१½॥

---

१०. ततो ददर्श भूतेशं तेजसां परमीश्वरम्, इति न.सं.पु.पाठः ।
१०क. विविधैः स ननाम च, इति न.सं.पु.पाठः ।
११. ज्योतिषां पुञ्जदेहाय, इति न.सं.पु.पाठः ।
११क. वाग्विभवोद्भवं स्तवम्, इति न.सं.पु.पाठः ।

स्कन्द उवाच

एतत्स्तोत्रं समाकर्ण्य देवदेवो महाविभुः ॥५२॥
उमया सहितो दृष्ट्वा सहर्षं[१२] तस्य चेष्टितम्। उवाच वचनं तस्मै वरदानाय साम्प्रतम् ॥५३॥
महादेवः स्वभक्ताय निर्ज्जनाय तपस्विने।

ईश्वर उवाच

वरं वरय वत्स त्वं स्वान्तेप्सितमनुत्तमम् ॥५४॥
ददामि ते महाबाहो भुक्तिमुक्तिप्रदं वरम्। सुतपोरज्जुना बद्धामानीतां गां त्वया स्नुताम् ॥५५॥
स्तुतिवत्सतरीं कामं दुह्यास्तां च यदृच्छया।

यम उवाच

त्वया यदि वरो मह्यं[१२क] दीयते लोकनन्दन ॥५६॥
त्रैलोक्येश तदा मह्यं दीयतां स वरोत्तमः। यथाग्नये पुरा दत्तं दिक्पालत्वं निरन्तरम् ॥५७॥
ममापि वर्त्तते कामस्तथा तन्मेऽज दीयताम्।

ईश्वर उवाच

भक्त यम महाप्राज्ञ यदुक्तञ्च त्वयाऽधुना ॥५८॥
भवतु तव काम्यञ्च[१३] दिक्पाल्यं पूषणात्मज। सानुनि दक्षिणे[१४] मेरोः कूटे तिष्ठ निरन्तरम् ॥५९॥
तत्तीर्थजलसम्पूर्णैर्हिरण्यकलशैः सुराः।
अद्यप्रभृति चाऽऽर्य त्वं तस्यां दिक्पालको भव। ततो लोका वदिष्यन्ति याम्या दिगिति सर्वथा ॥६०॥
भूयो दास्ये वरं तुभ्यं संसारोद्भवकारणम्। दुर्लभं जन्मिनां नृणां सुकृतं दुष्कृतञ्च यत् ॥६१॥
तथ्यातथ्यं यदुक्तं च संविचार्य्य विलेखय। तस्मात्त्वां प्रवदिष्यन्ति चित्रगुप्त इति जनाः[१५] ॥६२॥
ततः प्राणिन आदाय नियमैः शासितान् कुरु। धर्माधर्मौ विचार्याऽऽदौ स्वर्गे वा नरके क्षिप ॥६३॥

---

कार्तिक स्वामीले भन्नुभयो – यमको यस्तो स्तुति सुनेर पार्वतीका साथमा बस्नुभएका, देवताका पनि देवता महादेव शिवले तिनको क्रियाकलापलाई देखेर प्रसन्न हुँदै वर दिनका लागि एकान्त स्थलमा रहेका आफ्ना तपस्वी भक्त यमराजलाई भन्नुभयो ॥५२–५३½॥

महादेवले भन्नुभयो – हे बाबु ! आफ्नो मनमा लागेको सबभन्दा उत्तम वर माग। हे महाबाहु ! म तिमीलाई भुक्ति तथा मुक्ति दिने प्रकृतिका वर दिन्छु। तपस्यारूपी डोरीले बाँधेर ल्याइएकी, स्तुतिरूपी बाच्छो भएकी, स्तनबाट दूध प्रस्रवण गराइराखेकी यी गाईबाट इच्छा अनुसार मन परेको वस्तु दोहन गर ॥५४–५५½॥

यमराजले भन्नुभयो – हे लोकनन्दन ! हे त्रिलोकेश ! यदि हजुर मलाई वर दिनुहुन्छ भने दया गरेर अघि अग्निलाई जसरी सधैँ दिक्पाल भएर रहने वर दिनुभयो, मेरो पनि त्यस्तै इच्छा छ। हे ब्रह्मन् ! मलाई पनि त्यस्तै वर दिनुहोस् ॥५६–५७½॥

महादेवले भन्नुभयो – हे महाप्राज्ञ ! हे भक्त यम ! हे सूर्यपुत्र ! अहिले तिमीले जे भन्यौ, तिम्रो त्यो इच्छा पूर्ण होस्। तिमी दिक्पाल बन। तिमी सुमेरुको दक्षिणतर्फको टाकुरामा गएर सदा वास गर ॥५८–५९॥

हे आर्य ! आजदेखि तिमी दक्षिण दिशाका दिक्पाल भयौ। तिमी त्यहाँको अधिपति भएर बस। त्यसपछि लोकले त्यस दिशालाई याम्यदिक् अर्थात् यमराजको दिशा भनेर भन्नेछन्। तिमीलाई फेरि म अर्को वर दिन्छु– यस धर्तीमा जन्मिएका मानिसहरू संसारमा जन्मनुको कारणभूत दुर्लभ पुण्य र पाप छ, त्यो तिमी जस्ताको तस्तै भनेअनुसार राम्रोसित विचार गरेर लेख्न लगाऊ। त्यसपछि सबैले तिमीलाई चित्रगुप्त भन्नेछन्। अनि मृत प्राणीहरूलाई ल्याएर तिनीहरूमाथि यथायोग्य शासन गर। तिनीहरूको धर्म र पाप के छ ? पहिले विचार गरेर तिनीहरूलाई स्वर्ग वा नरक जहाँ उचित हुन्छ, व्यवस्था गर ॥६०–६३॥

---

१२. हर्षं विलोक्य, इति न.सं.पु.पाठः। १२क. अद्यैव भवता तन्मे , इति न.सं.पु.पाठः।
१३. तत्ते भवतु कामञ्च, इति न.सं.पु.पाठः। १४. सानौ दक्षिणतो, इति न.सं.पु.पाठः। १५. श्रुतः, इति न.सं.पु.पाठः।

लोकास्त्वाञ्च वदिष्यन्ति काल इत्यन्तकः पुनः । इमं दण्डञ्च पाशञ्च गृहाण मनसा ध्रुवम् ॥६४॥
पापीयसां नराणाञ्च शासनाय च शासकः । मन्मायारज्जुपाशेनाऽऽबध्य लोके च[१६] जीविनः ॥६५॥
अन्तेश वशगान् तान् वै करिष्यसि न संशयः[१७] । एकतस्तव पाशेन सम्बध्य तान्[१८] पुनस्ततः ॥६६॥
दण्डेनाऽनेन काल त्वं समाकर्षय[१९] तर्जयन् । यावन्तो जीविनो लोके गर्भस्था निःसृतास्त्वयि ॥६७॥
तावत्सु यातनां कुर्य्या मद्भक्तांश्च विना पुनः । भस्मरुद्राक्षदेहाँस्तान् तुलसीमालिनस्तथा ॥६८॥
मद्भक्तान् विष्णुभक्तांश्च प्रेक्ष्य चक्षुर्निमीलय । भूयो दास्याम्यहं तुभ्यमनुत्तमवरं यम ॥६९॥
देवासुरमनुष्याणां पितॄणां त्वं पतिर्भव ।

स्कन्द उवाच

दत्त्वेति प्रवरं तस्मै भक्ताय भक्तवत्सलः ॥७०॥
लोकनियमपर्य्यायं त्वन्तर्द्धानं ययौ हरः । ततो ब्रह्मादयो देवा हर्षं चक्रुस्तदा भृशम् ॥७१॥
लब्धवरं समागत्य निरीक्ष्यार्य्यं तपस्विनम् । दत्त्वा शक्तिं ततस्तस्मै ह्यभिषेकं ददुः पुनः ॥७२॥
तत्तीर्थजलसंपूर्णैर्हिरण्यकलशैः सुराः । ततो ब्रह्मा सुरैः सार्द्धं दक्षिणस्यां ययौ दिशि ॥७३॥
पुरोधाय यमं मेरोर्वाद्योत्सवैः स्तवोत्तमैः । तत्र संस्थाप्य दिक्पालमपूपुजद्यमं तदा ॥७४॥
ततो ब्रह्मा ययौ व्योम्नस्त्वन्तर्द्धानं ययुः सुराः ।

---

मानिसहरूले तिमीलाई काल तथा अन्तक पनि भन्नेछन् । हे यमराज ! पापीहरूलाई दण्ड दिनका लागि यो दण्ड र पाश मनमनै धारण गर । पापी मानिसहरूको शासनका निमित्त तिमी शासक हुनेछौ । हे यमराज ! मेरो मायारूपी डोरीले बाँधेर तिमीले ती प्राणीहरूलाई वशमा ल्याउनेछौ, यसमा कुनै शङ्का छैन । हे काल ! एकातिर कालको पञ्जामा परेको जीवलाई पाशमा बाँधेर, अर्कातिर यो दण्डले तर्साउँदै जीवलाई तिमी तान्नेछौ । मेरा भक्तबाहेक लोकमा जति जीवहरू गर्भमा बसेर निस्केका छन्, तिमीले तिनीहरूलाई यातना दिनू । शरीरमा खरानी घस्ने, रुद्राक्ष लगाउने र तुलसीको माला धारण गर्ने मेरा भक्त तथा विष्णुका भक्तलाई देख्यौ भने तिमीले आँखा चिम्लनू अर्थात् दण्ड नदिनू । हे यमराज ! फेरि तिमीलाई म एउटा उत्तम वर दिन्छु– तिमी देवता, राक्षस, मानिस र पितृहरूका पनि अधिपति बन ॥६४–६९॥

कार्तिक स्वामीले भन्नुभयो – भक्तवत्सल महादेव आफ्ना भक्त यमराजलाई लोकको स्थितिका लागि यति वर दिएर अन्तर्धान हुनुभयो । अनि ब्रह्मा आदि सारा देवताले वर पाएका तपस्वी यमराजलाई देखेर धेरै खुसियाली मनाए । फेरि देवताहरूले तिनलाई एउटा शक्ति दिएर त्यस तीर्थको जलले भरिएको सुनको कलशले अभिषेक गरिदिए ॥७०–७२½॥

त्यसपछि यमराजलाई अगाडि लगाई सम्पूर्ण देवतालाई साथमा लिएर गान, बजान, उत्सव, स्तोत्र पाठहरू गर्दै ब्रह्माजी सुमेरु पर्वतको दक्षिण दिशामा जानुभयो र त्यहाँ यमराजलाई दिक्पालको पदमा राखेर उनको पूजा गर्नुभयो । त्यसपछि आकाशबाट ब्रह्मा र देवताहरू अन्तर्धान भए ॥७३–७४½॥

---

१६. मन्मायाह्वादरज्जुवार्दपाशेनाबध्य, इति न.सं.पु.पाठः ।
१७. अन्तेश वसमाह्वानमाकृष्यन्ति तमेकतः, इति न.सं.पु.पाठः ।
१८. सम्बध्वा तम्, इति न.सं.पु.पाठः ।
१९. समाकृष्यसि, इति न.सं.पु.पाठः ।

ततः प्रभृति चाऽऽर्योऽसौ दिक्पालश्चाभवद्यमः ॥७५॥

हिमवति महाशैले वरं लब्ध्वा[२०] कपालिनः। यमस्तीर्थे त्रिधा स्नातः सर्वपापैर्विवर्ज्जितः ॥७६॥

सिद्धकूटं गिरिं धीर आरुरोह सकृन्मुने। शक्रलोके सुखं भुक्त्वा दिक्पालोऽसावभवत् ततः ॥७७॥

भूयश्च विप्रेश महामनाऽसौ आदाय चाऽऽज्ञाञ्च पितुस्तपश्च।
चकार नूनं वरनैर्ऋतोऽपि श्रुत्वा च लब्धः सुवरो यमेन[२१] ॥७८॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे यमदिक्पालसिद्धिर्नाम चतुर्दशोऽध्यायः ॥१४॥

---

यमराजले हिमालयमा तपस्या गरी महादेवबाट वरदान पाएर त्यसै दिनदेखि दिक्पाल भएका हुन्। यमराजले यमतीर्थमा तीन पटक स्नान गरे र सम्पूर्ण पापबाट मुक्त भई निर्मल बने। हे अगस्त्य मुनि ! धैर्यशाली तपस्वी यम सिद्धकूटपर्वतमा आरोहण गर्न सफल भए। उनी इन्द्रलोकमा प्राप्त हुने सबै किसिमका सुखभोग गरेपछि दक्षिणदिशाको दिक्पाल भनी प्रसिद्ध भए ॥७५-७७॥

हे विप्र ! हे पूज्य अगस्त्य मुनि ! यसरी यमराजले उत्तम वर पाएको कुरा सुनेर महत्त्वाकाङ्क्षी निर्ऋतिले पनि आफ्ना पिताको आज्ञा लिएर तपस्या गरे ॥७८॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गत हिमवतखण्डमा
दक्षिण दिशाको दिक्पालका रूपमा यमको अभिषेक नामक
चौधौं अध्याय पूर्ण भयो।

---

२०. लब्धवरः, इति न.सं.पु.पाठः। २१. लब्धं सुवरं यमेन, इति न.सं.पु.पाठः।

# पञ्चदशोऽध्यायः

मानसरोवरवर्णनम्, निर्ऋतिर्विदिक्पालरूपेण प्रतिष्ठा च

अगस्त्य उवाच

कश्चाऽसौ नैर्ऋतो देव तपस्तेपे महाबलः। कस्माल्लब्धवरोऽभूद्वै कस्मिँस्तीर्थोत्तमे शुभे ॥१॥
मयि यद्यनुकम्पा चेत्सर्ववार्ताविशारद। एतदिच्छाम्यहं श्रोतुं तन्मेऽनुकम्पय ध्रुवम् ॥२॥

स्कन्द उवाच

निखिलेन घटोद्भूत तस्य यच्चरितं पुरा। त्वद्धार्देन प्रवक्ष्यामि तत्सर्वं शृणु साम्प्रतम् ॥३॥
कश्यपस्य सुतो धीमान् नैर्ऋतो नाम नामतः। वीरोऽसौ सर्वजन्तूनां सर्वोन्नतपराक्रमः ॥४॥
नखायुधो महातेजा महाबलोन्नतोऽग्रणीः। रात्रिञ्चरश्च हिंसात्मा मांसाहारी च रक्तपः ॥५॥
कालान्तरे[1] महाबाहुः पप्रच्छ पितरं मुनिम्। उपागम्य स्थितं यत्र कश्यपः स द्विजोत्तमः ॥६॥
त्रिः परिक्रम्य कर्बूरो भक्तिपूर्वन्ननाम च। निधाय चाऽञ्जलिं मूर्ध्नि चकार भावतः स्तुतिम्[2] ॥७॥

नैर्ऋत उवाच

नमो जनकदेवाय प्राणिनां जनकाय च। सृष्टिस्थितिविनाशानां कर्त्रे च मुनये नमः ॥८॥
ब्रह्मणे विश्वरूपाय नमस्ते ब्रह्मतेजसे। योगीश्वराय पूतात्मन् नमस्ते ब्रह्मवर्च्चसे ॥९॥
तात इच्छाम्यहं श्रोतुं त्वत्तो ब्रह्मविदांवर। वैवस्वतेन यत्तप्तं कस्मिँस्तीर्थेऽद्रिशेखरे ॥१०॥

---

अध्याय- १५

मानसरोवरको माहात्म्य एवं नैर्ऋत्य दिशाको दिक्पालका रूपमा निर्ऋतिको अभिषेक

अगस्त्य ऋषिले भन्नुभयो – हे कार्तिकस्वामी ! ती महाबली निर्ऋति को हुन् ? तिनले कुन तीर्थमा तपस्या गरे र कसबाट वर पाए ?। हे सर्वज्ञ ! यदि हजुर ममाथि अनुग्रह गर्नुहुन्छ भने म यो कुरा सुन्न चाहन्छु, मलाई दया गर्नुहोस् ॥१-२॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! ती निर्ऋतिको पहिलेको जुन चरित्र छ, तपाईंको स्नेहले गर्दा त्यो सबै बताउँछु, अब सुन्नुहोस्। कश्यपका नैर्ऋत नाम गरेका बुद्धिमान् छोरा थिए। ती सबै प्राणीमध्ये वीर सबैभन्दा पराक्रमी पनि थिए। नङ्ग्रा नै हतियार भएका ती नैर्ऋत अत्यन्त तेजस्वी,पराक्रमी र सबैका अगुवा, राति-राति हिँड्ने, मारकाट गर्ने, मासु खाने र रगत पिउने गर्दथे। एक दिन उनले आफ्ना पिता कश्यप बसेको ठाउँमा आएर तीन पटक उहाँको परिक्रमा गरी अञ्जलिपुट शिरमा राखेर भक्तिभावले स्तुति गरे ॥५-७॥

नैर्ऋतले भने – सारा देवताका पिता, सम्पूर्ण प्राणीलाई जन्म दिने तथा सृष्टि र संहार गर्ने मुनिस्वरूप हजुरलाई नमस्कार छ। सर्वव्यापक, ब्रह्मस्वरूप, ब्रह्मतेजले युक्त हजुरलाई नमस्कार छ। योगीश्वरस्वरूप, ब्रह्मवर्चस्वी, पवित्र आत्मा भएका हजुरलाई नमस्कार छ। हे ब्रह्मज्ञमा श्रेष्ठ पिताज्यू ! सूर्यका छोरा यमराजले कुन पर्वतको कुन टाकुराको तीर्थमा तपस्या गरे ? म हजुरबाट सुन्न चाहन्छु ॥८-१०॥

---

१. कञ्चित् काले, इति न.सं.पु.पाठः। २. स्तुतिञ्चकार भावतः, इति न.सं.पु.पाठः।

कश्यप उवाच

श्रृणु पुत्र प्रवक्ष्यामि यत्पृष्टं मां त्वया खलु[३]। वैवस्वतेन यत्तप्तं यच्च लब्धञ्च शूलिनः ॥११॥
आसीत्सूर्यसुतो धीमान् वैवस्वतोऽभिधानतः। सर्वजन्तुदयात्माऽसौ लोकधर्म्मप्रमाणतः ॥१२॥
सन्तोष्य पितरं तेन सूपदिष्टो हितेन च। हृष्टस्तद्वचसा तूर्णं[३क] तप्तुमियेष सूरजः ॥१३॥
भाद्रस्य पूर्णिमायां स पूर्वभाद्रेण संयुजि[४]। अनुशिष्टं समादाय हिमवन्तं गिरिं ययौ ॥१४॥
सिद्धतीर्थजले स्नात्वा सिद्धकूटं समाश्रितः। जजाप चैकचित्तेन संस्थाप्य विधिवद्विभुम् ॥१५॥
ततस्तस्मै महादेवो ददौ वरमनुत्तमम्। लब्धवरो महेशानाद्दिक्पालोऽभून्न संशयः ॥१६॥
दक्षिणस्यां दिशो मेरोः सर्वकर्त्ता स एव च। स एव पितृभर्त्ता च जन्तूनां शासकः क्रमात् ॥१७॥
गन्तव्यः प्राणिभि[४क]स्तस्य लोकश्चान्ते न संशयः। अस्ति वाञ्छा च ते वत्स चेतसि तप्यतां तपः ॥१८॥
षड्वर्गञ्च[५] समुत्सृज्य निश्चलः सुजितेन्द्रियः।

नैर्ऋत उवाच

गन्तव्यं शेखरे कस्मिँस्तीर्थे चाऽप्लावनं कुतः ॥१९॥
अनुष्ठेयं कथं तात समाराध्यश्च कः पुनः। उपदेशो ध्रुवं मह्यं दीयतां मुनिसत्तम ॥२०॥
गुरोर्विनोपदेशं हि अकर्म इति नः श्रुतम् ।२१॥

कश्यप उवाच

हिमवच्छानुनि श्रेष्ठे[६] मानो नाम सरोवरः। पूर्वं ससर्ज्ज धाता वै सर्वलोकहिताय च ॥२२॥

---

कश्यपले भन्नुभयो – हे बाबु ! यमराजले तपस्या गरेर भगवान् शिवबाट जस्तो वर प्राप्त गरेका थिए, त्यस विषयमा तिमीले गरेको सोधे अनुसार म बताउँछु। सूर्यका वैवस्वत (यम) नाम गरेका बुद्धिमान् छोरा थिए। ती प्राणीहरूले गरेको धर्मका आधारमा सबैमाथि दया गर्दथे। तिनले पितालाई खुसी बनाए, पिताले पनि तिनलाई हितकर उपदेश दिए। त्यसपछि सूर्यपुत्र यमराजले सहर्ष तपस्या गर्ने इच्छा गरे ॥११-१३॥

पूर्वभाद्र नक्षत्र परेको भदौको पूर्णिमाका दिन पिताको आज्ञा लिएर यमराज हिमालय पर्वतमा गए। सिद्धतीर्थको जलमा स्नान गरेर सिद्धकूटमा बसी विधिपूर्वक शिवलिङ्गको स्थापना गरेर उनले एकचित्त भई जप गरे। प्रसन्न भएर महादेवले पनि उनलाई अत्यन्त उत्तम वर दिनुभयो। यसरी महादेवबाट वर पाएर नै ती यमराज दिक्पाल बनेका थिए। ती यमराज सुमेरुको दक्षिण दिशाको अधिपति भएर सबै कार्य गर्दछन्। पितृहरूको पालन गर्ने र सारा प्राणीमाथि शासन गर्ने पनि उनी नै हुन्। अन्त्यमा सबै प्राणीहरू उनकै लोकमा जानुपर्छ, यसमा सन्देह छैन। हे पुत्र ! तिमीलाई पनि तपस्या गर्ने इच्छा छ भने काम, क्रोध आदि षड्वर्गलाई त्यागी इन्द्रियहरूलाई वशमा राख्दै स्थिर भएर तपस्या गर ॥१४-१८॥

नैर्ऋतले भने – हे मुनिश्रेष्ठ पिताज्यू ! कुन टाकुरामा जानुपर्छ र कुन तीर्थमा स्नान गर्नुपर्छ ?तपस्या कसरी गर्नुपर्छ र तपस्या गर्दा कसको आराधना गर्नुपर्छ ? मलाई विस्तारपूर्वक उपदेश दिनुहोस् किनभने गुरुको उपदेशविना गरेको काम फलदायी हुँदैन भन्ने कुरा मैले सुनेको छु ॥१९-२१॥

कश्यपले भन्नुभयो – अघि ब्रह्माजीले सबै लोकको हितका लागि हिमालयको उत्तम शिखरमा मान नाम गरेको सरोवर (तलाउ) बनाउनुभएको थियो ॥२२॥

---

३. मयि तत्खलु, इति न.सं.पु.पाठः।
४. हर्षपूर्णयुतो नेमिः, इति न.सं.पु.पाठः।
५. षड्वर्षात् स, इति न.सं.पु.पाठः।
६. हिमवतो वरे सानौ, इति न.सं.पु.पाठः।
३क. संयुते, इति न.सं.पु.पाठः।
४क. गन्तव्यो जीविभिः, इति न.सं.पु.पाठः।
५क. गुरोर्विनोपदेशं हि ह्यकर्म, इति नः श्रुतम्

हव्यकव्यार्च्चनं तत्र यत्कुर्वीन्ति नरोत्तमाः । तत्सर्वमक्षयं तेषा[७] स्वच्छन्दं मानसं भवेत्[८] ॥२३॥
तस्मात्त्वमपि च स्नानं कुर्यास्तत्र[९] सुभक्तितः । तपस्तपसि कर्बूर विधानं शृणु विस्तरम् ॥२४॥
कृत्वा स्नानं जलैस्तीर्थे विभूत्या लेपनञ्चरेत् । विधायाऽङ्गेषु रुद्राक्षान् धिया मन्त्रं जपन्मुदा ॥२५॥
संस्थाप्य विधिवद्रुद्रं स्तूया भक्त्या च हे सुत[१०] । एवं सञ्चर कर्बूर ततः सिद्धिर्भविष्यति ॥२६॥

अगस्त्य उवाच

भगवन् श्रोतुमिच्छामि सर्वज्ञोऽस्ति भवान्[११] ध्रुवम् । कथं ससर्ज्ज धाता वै दिव्यं सरोवरं पुरा ॥२७॥
मानःसरः, इति ख्यातं स्नानात् संसारतारकम् । तस्यां तुहिनसंहत्यां को मुक्तोऽभूद्वद प्रभो ॥२८॥

स्कन्द उवाच ।

ससर्ज्ज मनसा ब्रह्मा मुदा यत्तस्य[१२] शेखरे । त्रिंशद्योजनविस्तारं तदेवाऽगाधविस्तृतम् ॥२९॥
गङ्गामावाह्य धाताऽसौ दध्यौ परं शिवं हृदा । प्रादुर्बभूव गङ्गा सा ह्याखाते स्वच्छजीवना ॥३०॥
धाताऽऽलोक्य शिवं तोयं हर्षवाँस्तत्र कुम्भज । अवोचदाशिषं तस्यै लोकमोक्षहिताय च ॥३१॥

ब्रह्मोवाच

तिष्ठ देवि ह्रदेऽजस्रं जलमूर्त्ते नमोऽस्तु ते । मोक्षार्थिमोक्षदे मातर्भक्त्या वरप्रदे शुभे ॥३२॥
यः स्नाति च[१३] नरो भक्त्या त्वन्मूर्त्यर्णोह्रदे सकृत् । न पुनर्जायते योनावपि[१४] जन्तुर्नरः किमु ॥३३॥

---

त्यस मानसरोवरमा जुन मानिसले देवकर्म र पितृकर्म गर्दछन्, त्यस कर्मबाट अक्षय फल प्राप्त हुन्छ र तिनले इच्छा अनुसारको फल प्राप्त गरी स्वच्छन्द रूपमा इच्छित लोकमा जान पाउँछन् र तिनीहरूको मन पनि स्वच्छन्द हुन्छ । हे नैर्ऋत ! त्यसैले तिमी पनि त्यहाँ गएर भक्तिपूर्वक स्नान गर । यदि तिमी तपस्या गर्छौ भने त्यसको विधान पनि सविस्तार सुन । तीर्थको जलमा स्नान गरेर शरीरमा विभूति लगाउनुपर्छ अनि अङ्ग-प्रत्यङ्गमा रुद्राक्ष लगाएर प्रसन्नतापूर्वक मनमनै मन्त्र जप्नुपर्छ । हे पुत्र नैर्ऋत ! विधिपूर्वक शिवलिङ्गको स्थापना गरेर मन, वचन र कर्मले स्तुति गर्नुपर्छ । हे कर्बुर ! यसो गर्‍यौ भने तिमीलाई पनि सिद्धि प्राप्त हुनेछ ॥२३-२६॥

अगस्त्य मुनिले भन्नुभयो – हे भगवान् ! निश्चय नै हजुरलाई सबै कुरा थाहा छ । त्यो दिव्य मानसरोवर भन्ने तलाउ ब्रह्माजीले कसरी सिर्जना गर्नुभयो ? म हजुरबाट सुन्न चाहन्छु । हे प्रभो ! मानसरोवरले स्नान गर्ने सबैलाई संसारबाट पार लगाउँछ भन्ने कुरा प्रसिद्ध छ । हिउँ नै हिउँले ढाकिएको त्यस सरोवरमा स्नान गरेर कसले मुक्ति पायो ? मलाई बताउनुहोस् ॥२७-२८॥

कार्तिक स्वामीले भन्नुभयो – ब्रह्माजीले खुसी भएर मनले त्यस शिखरमा तीस योजन लम्बाइ, तीस योजन चौडाइ र त्यति नै मात्रामा गहिराइ भएको एउटा सरोवर सृष्टि गर्नुभयो । ब्रह्माजीले त्यस सरोवरमा गङ्गालाई आवाहन गरेर मनमनै शिवजीको ध्यान गर्नुभयो । त्यसपछि स्वच्छ जल भएकी गङ्गा त्यस सरोवरमा प्रकट भइन् । हे अगस्त्य मुनि ! त्यस स्थानमा त्यो कल्याणकारक जल देखेर ब्रह्माजी प्रसन्न हुनुभयो । लोकको हित र मोक्षका लागि उहाँले गङ्गालाई आशीर्वाद पनि दिनुभयो ॥२९-३१॥

ब्रह्माजीले भन्नुभयो – हे जलमूर्ति देवी ! यस सरोवरमा सधैँ बस्नुहोस् । मोक्षको चाहना गर्नेलाई मोक्ष दिने, कल्याणकारक वर प्रदान गर्ने हे आमा ! हजुरलाई नमस्कार छ । जो मानिसले हजुरको मूर्तिस्वरूप जलले पूर्ण यस सरोवरमा एकपटकमात्र स्नान गर्छ भने त्यसले फेरि अर्को जन्म लिनुपर्ने छैन । मानिसको त के कुरा, जुनसुकै प्राणी भए पनि त्यो मुक्त हुन्छ ॥३२-३३॥

---

७. प्राप्य, इति न.सं.पु.पाठः । ८. लभेत्, इति न.सं.पु.पाठः । ९. कुर्यात्तस्मात्, इति न.सं.पु.पाठः ।
१०. त्रिविधैः स्तोत्रयेत्सुत, इति न.सं.पु.पाठः । ११. भवति, इति न.सं.पु.पाठः । १२. यत्तेन, इति न.सं.पु.पाठः ।
१३. स्नायते, इति न.सं.पु.पाठः । १४. न पुनर्जन्यता योनौ अपि, इति न.सं.पु.पाठः ।

स्कन्द उवाच

एवं दत्वाऽऽशिषं तस्मै तत्र प्रजापतिर्मुदा। दिव्यवर्षशतन्तेपे सर्वभूतोद्भवाय च ॥३४॥

ततः ससर्ज्ज धाताऽऽदौ सप्तर्षीन्मनसा ततः। जन्तूँश्चतुर्विधान्देवान् लब्धशक्तिश्च शूलिनः ॥३५॥

क्वचित्कालान्तरेऽगस्त्य ब्रह्मणि तपसि स्थिते। विमृश्य च तपः[१५] कर्त्तुं ते मनो दधिरे पुरा ॥३६॥

सप्तर्षयो मुदा तत्र दृढं तपः सुतेपिरे। सम्यक् पृथक् स्थिता रुद्रं समाराध्य च भक्तिभिः ॥३७॥

गङ्गामावाहयामासुर्युगपत्ते[१६] महर्षयः। समाप्लवार्च्चकास्तत्र पाशायुधाः शिवात्मनः ॥३८॥

ततो गङ्गा महापुण्या कस्मायाद्य व्रजाम्यहम्। शापं दास्यन्ति मे ते वै, इति चिन्ताकुला सती ॥३९॥

वेपमाना मुहुर्गङ्गा कृत्वैकांशञ्च सप्तधा। यत्र तत्र स्थिता आर्यास्तत्रोवाह पृथक् पृथक्[१७] ॥४०॥

शैलानां शेखरेभ्यस्ता अवतार्य पृथक् तदा। ऋष्यन्तिकं समुद्दिश्य स्वात्मना विविशुर्ह्रदे ॥४१॥

ततः प्रेक्ष्य महात्मानः सप्तधारां समावहाम्। मुमुदुस्ते भृशं तस्यै चाऽऽशिषः प्रददुः पुनः ॥४२॥

ऋषय ऊचुः

स्नानकार्यार्थमुद्दिश्य नः प्रतिवाहिता सती। अद्य प्रभृति चाऽऽर्य्ये त्वं सप्तानां फलदा भव ॥४३॥

तस्मात्त्वं धर्मकामार्थमोक्षसौभाग्यमेव च। हृद्यं पराक्रमं राज्यं सप्तानां[१८] फलदा सदा ॥४४॥

स्कन्द उवाच

इति दत्त्वाऽऽशिषोऽगस्त्य ताभ्यो महर्षयो मुदा। आसंस्तत्र तपोयुक्ताः शिवार्च्चनरताः सदा ॥४५॥

शताब्दान्ते ह्रदस्याऽऽर्य चाऽभूद् युक्ताभिधानकम्। कृपया शूलिनो देव्या हितायासुभृतां पुरा ॥४६॥

---

कार्तिक स्वामीले भन्नुभयो – यसरी गङ्गालाई आशीर्वाद दिएर ब्रह्माजीले सम्पूर्ण प्राणीको सृष्टि गर्न दिव्य एक सय वर्षसम्म आनन्दित हुँदै तपस्या गर्नुभयो। त्यसपछि शिवजीबाट शक्ति प्राप्त गरेर ब्रह्माजीले सर्वप्रथम सप्त ऋषिहरूको सृजना गर्नुभयो त्यसपछि उहाँले उद्भिज्ज, स्वेदज, अण्डज र जरायुज गरी चार प्रकारका प्राणी तथा देवताहरूको पनि सृष्टि गर्नुभयो। हे अगस्त्य मुनि ! ब्रह्माजी तपस्यामा संलग्न भएको केही समय बितेपछि सप्त ऋषिहरूले पनि छलफल गरेर तपस्या गर्ने विचार गरे। ती सप्तर्षिहरू छुट्टाछुट्टै राम्रोसँग बसेर भक्तिपूर्वक महादेवको आराधना गर्दै प्रसन्न मनले कठोर तपस्या गरे। शिवजीमा नै समर्पित भएका र हातमा पासो लिएका ती ऋषिहरूले एकसाथ स्नान गरेर पूजा गर्दै गङ्गाजीको आवाहन गरे ॥३४–३८॥

त्यसपछि म अहिले कुन ऋषि भएतिर जाऊँ ? एकातिर मात्र जाँदा ती अरूले मलाई सराप्छन् भनेर पीर गर्दै थर्थर काँपेकी पुण्यदायिनी गङ्गाले आफ्नो एक अंशलाई सात धारामा विभाजन गराएर जहाँ–जहाँ ती सातजना तपस्या गरेर बसेका थिए त्यहाँ–त्यहाँबाट बगिन्। त्यसबेला गङ्गाका ती सातै धारा सात पहाडका शिखरबाट छुट्टाछुट्टै खसे र ऋषिहरूको नजिक हुँदै सरोवरमा प्रवेश गरे। त्यसपछि एकनासले सात धारामा बगेर आएकी गङ्गालाई देखेर ती महात्मा ऋषिहरू अत्यन्त खुसी भए। अनि ती सबैले गङ्गालाई आशीर्वाद पनि दिए ॥३९–४२॥

ऋषिहरूले भने – हे गङ्गा ! हाम्रो स्नानका लागि नजिकैबाट बगेर आएकी हुँदा आजदेखि तिमी सात प्रकारका फल दिने होऊ। तिमी सधैँ धर्म, अर्थ, काम, मोक्ष, सौभाग्य, पराक्रम र राज्य यी सात प्रकारका फल ह्रदयले चाहेजस्तो गरी दिन सक्ने होऊ ॥४३–४४॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! यसरी गङ्गालाई आशीर्वाद दिएर ती महर्षिहरू हर्षले शिवजीको पूजा गर्दै तपस्या गर्न लागे। यसरी ती ऋषिहरूले तपस्या गरेको एक सय वर्षको अन्त्यमा प्राणीहरूको कल्याणका निमित्त भगवान् शिव र पार्वती देवीका कृपाले त्यस सरोवरको 'मानसरोवर' भन्ने उपयुक्त नाम रह्यो ॥४५–४६॥

---

१५. विमर्श्य तपसः, इति न.सं.पु.पाठः।

१६. गङ्गामावाहनञ्चक्रुर्युगपत्ते, इति न.सं.पु.पाठः।

१७. आर्यास्तत्र ववाह सा पृथक्, इति न.सं.पु.पाठः।

१८. सप्तैते, इति न.सं.पु.पाठः।

शुक्रशुक्लदशम्यां तद्ह्रदे ह्यजीजनच्छिवः। हंसरूपं समास्थाय सौम्यः सुपत्रसुन्दरः ॥४७॥
रक्तचञ्चूश्च रक्ताङ्घ्रिः पीतलोहितलोचनः। महारजनसङ्काशः सुग्रीवः सुस्वरो[१९]ऽचरत् ॥४८॥
तत आर्य्योद्‌भवा तत्र हंसी चचार सुन्दरी। तदाकृतिः समं देवी हंसरूपेण शूलिना ॥४९॥
हंसदेहेन देवेशो हंसीदेव्याऽनिशं सह। चचार तद्ह्रदे नूनं दिव्यवर्षसहस्रकम् ॥५०॥
ब्रह्मा प्रेक्ष्याशु हंसौ द्वौ निर्भरं मुमुदे हृदा। चरन्तौ स्वच्छतोयेषु भक्षयन्तौ विसानि वै ॥५१॥
मेने कमलजो हंसौ शिवशक्त्यात्मकौ तदा। कावन्यौ तौ विना चात्र चरन्तौ चेति मानसे ॥५२॥
कृतो मनोहरः पूतो हंसरूपेण शूलिना। मद्ह्रद इति[२०] कृत्वाऽजो हंसरूपं दधार वै ॥५३॥
विष्णुर्दधार हंसाङ्गं हंसान् प्रेक्ष्य मुदा पुनः। शुभाकारो महासौम्यः[२१] सुन्दरोऽभिचचार वै ॥५४॥
सम्प्रेक्ष्य तत्सरो दिव्यं धर्मो हंसं दधार च। सुस्वरः[२२] सौम्यरूपोऽसौ शुक्लस्तत्र गलोत्तमः ॥५५॥
व्याप्य दिव्यसहस्राब्दं चिक्रीडुस्तद्ध्रदे हि ते। खादयन्तो विसं नूनं कण्डूयन्तश्च चञ्चुभिः[२३] ॥५६॥
अचीक्रिडदद्ध्रदे रुद्रो भवान्या सह वै सुखम्। कुम्भज ! हंसरूपेण तैः परिवारयन्मुहुः ॥५७॥
विभेद पूर्वतः कूटं हंसरूपेण विश्वसृक्। विक्रमैरुत्पपातार्णो महत्तरङ्कुलम् ॥५८॥
बिभेद याम्यतः कूटं हंसरूपेण शङ्करः। लीलासक्ता नदी दिव्या चोत्पपात जलोत्तमा ॥५९॥
बिभेदोत्तरतः कूटं हंसरूपेण केशवः। जलपूर्णा सुविस्तीर्णा शेखराल्लघुगामिनी ॥६०॥

---

जेठ महिनाको शुक्लपक्षको दशमी (दसहरा) का दिन महादेव त्यस सरोवरमा हाँसको रूप लिएर प्रादुर्भाव हुनुभयो। उहाँको रूप सौम्य थियो, प्वाँखहरू राम्रा थिए, राता चुच्चो र रातै पञ्जा थिए, पहेँलो र रातो मिसिएको सुनौलो (सुनजस्तै) रङ्गका आँखा थिए, पहेँलो रङ्गले युक्त भएको सुन्दर घाँटी थियो, उहाँ आवाज निकाल्दै घुम्नुहुन्थ्यो ॥४६-४८॥

त्यसैगरी हंसरूप शिवको जस्तै आकार लिएर पोथी हाँसका रूपमा गौरी प्रकट हुनुभयो। हंसरूपा गौरीसँग हंसरूप महादेवले त्यस तलाउमा दिव्य एक हजार वर्षसम्म दिनरात विहार गर्नुभयो। निर्मल पानीमा कमलका डाँठहरू खाएर डुलिरहेका ती हाँसका जोडीलाई देखेर ब्रह्माजी अत्यन्त प्रसन्न हुनुभयो ॥४९-५१॥

ब्रह्माजीले ती दुई हाँसका जोडीलाई शिवशक्तिस्वरूप ठान्नुभयो। उहाँहरू बाहेक अरू यस तलाउमा को डुल्न सक्छ भन्ने ब्रह्माजीका मनमा पऱ्यो। हाँसको रूप लिएर महादेवले मेरो सुन्दर तलाउलाई पवित्र पारिदिनुभयो। यो मेरो तलाउ हो भन्ने ठानेर ब्रह्माजीले पनि हाँसको रूप लिनुभयो। ती हाँसहरूलाई देखेर विष्णुले पनि उही आकारको उस्तै हाँसको रूप लिनुभयो र अत्यन्त सौम्य र अत्यन्त राम्रो भएर त्यहाँ डुल्न थाल्नुभयो ॥५२-५४॥

त्यस्तो दिव्य सरोवर देखेर धर्मले पनि मीठो स्वर भएको र सुन्दररूप तथा राम्रो घाँटी भएको सेतो हाँसको रूप लिनुभयो। दिव्य एक हजार वर्षसम्म उहाँहरूले त्यस तलाउमा कमलका डाँठहरू खाँदै र चुच्चाले शरीर कन्याउँदै क्रीडा गर्नुभयो। हे अगस्त्य मुनि ! हंसरूप महादेवले तिनीहरूलाई वरिपरि राखेर भवानीका साथमा त्यस तलाउमा आनन्दसँग बारम्बार क्रीडा गर्नुभयो। हाँसको रूप लिएका ब्रह्माजीले पूर्वपट्टिको थुम्को फोर्नुभयो। त्यसपछि ठूला-ठूला छालले युक्त भएको पानी जोडसित छचल्किँदै बाहिर निस्क्यो ॥५५-५८॥

हाँसको रूप लिएका महादेवले पश्चिमपट्टिको थुम्को फोर्नुभयो। त्यहाँबाट उत्तम जल भएकी दिव्य नदी लीला गर्दै निस्किइन्। हाँसको रूप लिएका विष्णु भगवान्‌ले उत्तरपट्टिको थुम्को फोर्नुभयो। त्यस टाकुराबाट तीव्र गतिले बग्ने जलपूर्ण विशाल नदी निस्किइन्। हंसरूपधारी स्वयं धर्मले दक्षिणपट्टिको थुम्को फोर्नुभयो। त्यहाँबाट तरङ्गले युक्त भएकी दिव्य नदी प्रकट भइन् ॥५९- ६०॥

---

१९. सुरवो, इति न.सं.पु.पाठः।
२०. मद्ध्रेदमिति, इति न.सं.पु.पाठः।
२१. तदाकृतिर्महासौम्यः, इति न.सं.पु.पाठः।
२१क. सम्प्रेक्ष्य तत्सरो धर्मो हंसं दधार च, इति न.सं.पु.पाठः।
२२. सुरवः, इति न.सं.पु.पाठः।
२३ मृणालं खादयन्नूनञ्चञ्चूना कण्डूयन्पुनः, इति न.संसपुपाठः।

अवाचीकूटतो धर्मः स्वात्मना बिभिदे तदा । उत्पपात नदी दिव्या तरङ्गैः सङ्कुला मुने ॥६१॥
ततो विनिर्ययौ तस्माज्जलधाराचतुष्टयम्[२४] । प्रपेतुर्गिरिशृङ्गात्ता वसोर्धारा इवोज्ज्वलाः ॥६२॥
पतितास्ताः समालोक्य ब्रह्मा हर्षितवान् भृशम् । नामधेयानि तासाञ्च चकार सदृशानि वै ॥६३॥

ब्रह्मोवाच

सुधीरेण तरङ्गेण चोत्पपाताऽद्रिशेखरात् । पुम्भावेन यतस्त्वं मे पुत्रो भवाऽनिशं नद ॥६४॥
सर्वेषां प्राणिनां[२५] पुत्र स्नातकानां त्वयि ध्रुवम् । चतुर्वर्गफलं वीर देयं किल्विषनाशकृत् ॥६५॥
सौम्येन लीलया पुत्रि त्वमुवाह सरिद्वरे । रुद्रयत्नोद्भवा यस्माच्छतरुद्रा भवाऽनिशम् ॥६६॥
त्रेतायुगे महासौम्ये सुरसरिद् भविष्यसि[२६] । रघूणां मानसं कर्म्म साधयिष्यसि सन्ततम् ॥६७॥
जलपूर्णा[२७] सुविस्तीर्णा सा चोवाह सरिद्वरा । विष्णुयत्नोद्भवे पुत्रि विष्णुमती भवाद्यतः ॥६८॥
स्पृशद्भ्यस्त्वज्जलं नित्यं[२८] भुक्तिमुक्तिहृदीप्सितम् । देयं देवि प्रभुत्वञ्च स्नातकेभ्यो विशेषतः ॥६९॥
आद्योद्भवे सरिच्छ्रेष्ठे स्वच्छकल्लोलमालिनी । सरिदाद्या समुवाह धर्मप्रियचिकीर्षया ॥७०॥
मुमुक्षूणां फलं देयं मत्सायुज्यं च बालिके । निस्सारयन्त्या पङ्कानि पुरा कृतान्यपि त्वया[२९] ॥७१॥
यो नरः स्नाति मत्कुण्डे[३०] सर्वमखोद्भवं फलम् । प्राप्नोति[३१] मत्प्रिये पुत्रि विहाय सर्वकिल्विषम् ॥७२॥
निर्मुक्तः सर्वपापेभ्यो गिर्य्यारोहणमात्रतः । प्रेक्ष्य सरो बुधो दिव्यं मनःकामं लभेत हि ॥७३॥
कदाचिद्दैवयोगेन भक्त्या संस्नाति यो जनः । तस्याऽर्चनजपाशक्तावपि[३२] पुण्यफलं महत् ॥७४॥

---

यसरी त्यस सरोवरबाट चारवटा नदी निस्किए। त्यस शिखरबाट निस्किएका ती धाराहरू वसुधारा झैँ उज्वल भएर पर्वतका चुचुराबाट तल झरे। त्यसरी ती नदीहरू झरेको देखेर ब्रह्माजी साह्रै खुसी हुनुभयो र उहाँले तिनीहरूको उपयुक्त नाम पनि राख्नुभयो ॥६१-६३॥

ब्रह्माजीले भन्नुभयो – हे नद ! गम्भीर तरङ्ग लिएर पुरुषको जस्तो चालले तिमी पहाडको टाकुराबाट निरन्तर फाल हाल्दै निस्क्यौ, त्यसैले अब तिमी मेरो पुत्र अर्थात् ब्रह्मपुत्र भयौ। पाप नाश गर्ने हे वीर पुत्र ! तिम्रो जलमा आएर स्नान गर्ने सबै प्राणीहरूलाई तिमीले चतुर्वर्गफल प्रदान गर्नू ॥६४-६५॥

नदीमा श्रेष्ठ हे पुत्री ! तिमी सौम्य लीला गर्दै बग्यौ, रुद्रको प्रयासबाट बगेकी हुँदा तिमी सधैँ शतरुद्रा नामले प्रसिद्ध होऊ हे सुन्दरस्वरूप भएकी पुत्री ! त्रेतायुगमा तिमी देवनदी अर्थात् गङ्गा हुनेछ्यौ र रघुवंशका सन्तानको मनोरथ सिद्ध गराइदिनेछ्यौ। पानीले भरिभराउ भई फैलिएर बग्ने हे पुत्री ! तिमी चाँहि विष्णुका प्रयत्नबाट निक्लेकी हुँदा आजदेखि विष्णुपदी नामले प्रसिद्ध होऊ। हे देवी ! तिम्रो जल छुने र तिम्रो जलमा नुहाउनेहरूलाई तिमीले भुक्ति, मुक्ति तथा मनमा लागेको कुरा र विशेष गरेर प्रभुत्वसमेत दिनू। हे नदीश्रेष्ठ ! स्वच्छ तरङ्गले युक्त भएर सर्वप्रथम उत्पन्न भएकी तिमी धर्मको हितका निमित्त बग्यौ। हे बाला मोक्षार्थीहरूले गरेको पूर्वजन्मको पाप पखाल्दै तिमीले ब्रह्मसायुज्य फल प्रदान गर्नेछौ ॥६६-७२॥

हे मेरी प्यारी छोरी ! जसले मेरो कुण्ड अर्थात् ब्रह्मकुण्ड-मानसरोवरमा नुहाउला, त्यसले आफ्नो सारा पाप पखालेर सम्पूर्ण यज्ञको फल पाउला। यस पर्वतमा चढ्नाले मात्रै पनि सारा पापहरूबाट मानिस मुक्त हुन्छ। यस दिव्य सरोवरको दर्शनले मात्रै पनि निःसन्देह इच्छा अनुसारको फल पाइन्छ। पूजाआजा, जप, तपस्या केही गर्न नसके पनि दैवसंयोगले कुनै दिन यहाँ श्रद्धासित नुहायो मात्र भने पनि त्यसले ठूलो पुण्य गरेको फल पाउँछ ॥७३-७४॥

---

२४. विनिर्ययुस्तस्माज्जलधाराश्चतुर्थकम्, इति न.सं.पु.पाठः।
२५. जन्मिनाम्, इति न.सं.पु.पाठः।
२६. भविष्यति, इति न.सं.पु.पाठः।
२७. जलपूर्णेन, इति न.सं.पु.पाठः।
२८. त्वज्जलस्पर्शकानां त्वम्, इति न.सं.पु.पाठः।
२८क. प्रववाह च ह्याद्या त्वम्, इति न.सं.पु.पाठः।
२९. पङ्कान्यपनयन् तेषां पुरा कृतान्यपि ध्रुवम्, इति न.सं.पु.पाठः।
३०. मत्कुण्डे स्नायते योऽत्र, इति न.सं.पु.पाठः।
३१. लभिता, इति न.सं.पु.पाठः।
३१क. लभक्त्यात्र स्नायते हि यः, इति न.सं.पु.पाठः।
३२. तस्यार्च्चनं जपाशक्त्यास्तस्य, इति न.सं.पु.पाठः।

उत्तीर्य्य दुःखसंसारं सर्वजन्म विहाय च। गर्भवासं महत्कष्टं व्रजेत्तु परमं पदम् ॥७५॥
चतुरशीतिलक्षासु योनिषु यातना च या। देहानां विद्यते तां हि विहाय परमं व्रजेत् ॥७६॥

स्कन्द उवाच

एवं दत्त्वा वरं ब्रह्मा ताभ्योऽक्रीडद्ध्रदान्तरे। हंसरूपोऽनिशं नित्यं हंसदेवैः समं मुने ॥७७॥
तत्र कालान्तरे देवाः स्वर्गादागत्य तेपिरे। गन्धर्वा गुह्यकाः सिद्धा दैत्याश्चाप्सरसस्तथा ॥७८॥
विहङ्गरूपकैर्देवैर्ह्रदो न मोक्ष्यते[33] कलौ। मेदिनीकुचहेमाद्रौ जम्बूद्वीपमनस्सरः ॥७९॥
विमुक्ता बहवस्तत्र दुःखसंसारनिःसृताः। तज्जलस्पर्शनात्सद्यो जनुं विहाय भाग्यतः ॥८०॥
आसीत् कश्चित् पुरा म्लेच्छो व्याधो विहङ्गनाशकृत्। ज्येष्ठशुक्लदशम्यां स हंसं हन्तुं गतो ह्रदे ॥८१॥
प्रस्खलितो ह्रदे हंसैर्जलान्तरे व्यलोड्यत। कष्टादुत्तीर्य तोयात्स निष्पापो जलमर्शनात्[34] ॥८२॥
ततो रौद्रा विमाने वै तमास्थाय सविग्रहम्। निन्युः शिवपुरं श्रेष्ठं पुष्पवृष्टिः पपात च ॥८३॥
दशकल्पं सुखं भुक्त्वा स पपात शिवालयात्। ततो राजाऽभवद् भूमौ सार्वभौमः शिवार्च्चकः ॥८४॥
अज्ञानतोऽपि स म्लेच्छो लब्धवान् तत्फलं मुने। ज्ञानयुक्तो नरः स्नानात् किं मुक्तिं नैव लप्स्यते[35] ॥८५॥
ततः पितुर्वचः पथ्यं निशम्य राक्षसोत्तमः। एकचित्तं समाधाय शीघ्रं मानसरो ययौ ॥८६॥
तस्मिंस्तीर्थे समागत्य सस्नौ सुविमले जले। पित्रादिष्टेन विधिना[36] चैकचित्तो महामनाः ॥८७॥

---

दुःखको संसारबाट पार भई गर्भवासको कष्ट भोगेर जन्म लिनु नपर्ने गरी त्यो परमपदमा पुग्छ। त्यसले चौरासीलाख योनिमा भोग्नुपर्ने सास्ती नभोगीकनै परमपद पाउँछ ॥७३-७६॥

कार्तिक स्वामीले भन्नुभयो - हे मुनि ! यसरी तिनीहरूलाई वरदान दिएर ब्रह्माजीले हाँसको रूप लिएर ती हंसरूपधारी देवताहरूसित तलाउभित्र लामो समयसम्म क्रीडा गर्नुभयो। त्यहाँ कालान्तरमा देवता, गन्धर्व, गुह्यक, सिद्ध, दैत्य र अप्सराहरूले स्वर्गबाट आएर तपस्या गरे। कलियुगमा हाँसको रूप लिएर आएका देवताहरूले पृथ्वीको स्तनरूपी सुमेरु पर्वतमा रहेको जम्बूद्वीपभित्रको यो मानसरोवर नाम गरेको तलाउ कहिल्यै छाड्ने छैनन्। त्यस तलाउको पानी छुनाले मात्रै पनि धेरै जना दुःखको संसारबाट पार भई जन्म छुटेर भाग्यले तत्कालै मुक्त भएका थिए ॥७७-८०॥

अघि चराचुरुङ्गीहरू मार्ने एउटा व्याधा थियो। ज्येष्ठशुक्ल दशमीका दिन त्यो व्याधा हाँस मार्न त्यस तलाउमा गयो। हाँस मार्न जाँदा त्यो चिप्लेर दहमा फर्‍यो र पानीभित्र हाँससँग पौडिन थाल्यो। यसरी पानीबाट बल्लतल्ल बाहिर निस्क्यो। त्यहाँको पानी छोएको हुँदा त्यो व्याधा पापबाट मुक्त भयो। त्यसपछि शिवजीका गणहरूले त्यस व्याधालाई सशरीर विमानमा राखेर शिवलोकमा लगे र त्यहाँ पुष्पवृष्टि पनि भयो। दश कल्पसम्म सुख भोग गरेर पुण्य सकिएपछि शिवलोकबाट त्यो व्याधा पृथ्वीमा जन्म्यो र शिवजीको उपासक चक्रवर्ती राजा भयो। जान्दै नजानीकन पनि स्नान गर्दा त त्यस म्लेच्छले त्यस्तो फल पायो भने जानी-बुझीकन मानिसले नुहायो भने त्यसले मुक्ति पाउँदैन र ? अवश्य पाउँछ। त्यसपछि बाबुले भनेको हितकर वचन सुनेर राक्षसोत्तम नैर्ऋत एकचित्त भएर तुरुन्त मानसरोवरमा गए। त्यहाँ गएर मनकारी नैर्ऋतले पिताले भनेबमोजिमको विधिले एकचित्त भएर तीर्थको निर्मल जलमा स्नान गरे ॥८१-८७॥

---

३३. देवैर्न्न मोक्ष्यते ह्रदः, इति न.सं.पु.पाठः।
३४. निष्पापस्तज्जलं स्पृशन्, इति न.सं.पु.पाठः।
३५. स्नानान्मुक्तिं लप्स्यति किं न च, इति न.सं.पु.पाठः।
३६. यथोक्तविधिना पित्रा, इति न.सं.पु.पाठः।

ततो भूत्या विलिप्ताङ्गो रुद्राक्षाँश्च दधौ तनौ। ददौ दानानि विप्रेभ्य आरोहद् ब्राह्मशेखरम् ॥८८॥
तत्र निषधशृङ्गेऽसौ ह्यगम्ये सर्वप्राणिनाम्[३७]। बहुधातुसमायुक्ते बहुरत्नसुमिश्रिते ॥८९॥
कृष्णायसमयं लिङ्गं संस्थाप्य विधिवत्पुनः। तीर्थोदकेन चाप्लाव्य पूजाञ्चक्रेऽर्हणैस्ततः ॥९०॥
दिव्यासने समासीनः प्राङ्मुख ऋजुविग्रहः। ततो निरीक्ष्य नासाग्रमीषत्सम्प्रेक्ष्यलोचनः ॥९१॥
ततो जजाप वीरोऽसौ एकचित्तो धिया तदा। दिव्यवर्षशतं साग्रं ध्यायं ध्यायं[३८] पुनः पुनः ॥९२॥
ततो वर्षावसाने स आविर्भूतो महेश्वरः। आश्विनशुक्लसप्तम्यां दातुं भक्ताय सद्वरम्[३९] ॥९३॥
कर्बूरोऽपि महातेजा रुद्रभक्तिपरायणः। संप्रेक्ष्य तं महादेवं स्तोत्रं चक्रे महामनाः ॥९४॥

नैर्ऋत उवाच

शिवं शान्तरूपं शिवाकारदेहं शिवार्द्धप्रदेशं शिवांशोद्भवन्तम्।
शिवाद्यं शिवाङ्गं कृपासागरं तं महानीलकण्ठं भजेऽहं भजेऽहम् ॥९५॥
ॐ नमो ज्ञानरूपाय सूक्ष्मरूपाय वै नमः। ज्ञानज्ञानाय शुद्धाय नमः स्थूलतराय ते ॥९६॥
देवानामपि देवाय दिव्यरूपाय ते नमः। पराय परमेशाय नमः पूज्यतमाय ते ॥९७॥
परापरविमुक्ताय सर्वपूज्याय ते नमः। नित्याय नित्यरूपाय दीप्ताङ्गाय नमो नमः ॥९८॥
पूज्यानामपि पूज्याय पूज्यपूज्यात्मने नमः। दीप्ताय दीप्तनेत्राय दिव्यभावाय ते नमः ॥९९॥
शक्तिरूपाय शान्ताय शुद्धयैकहेतवे नमः। शुद्धाय शुद्धरूपाय नमः शुद्धतमाय ते ॥१००॥

---

त्यसपछि उनले शरीरभरि विभूति लगाएर रुद्राक्ष धारण गरे अनि ब्राह्मणहरूलाई दान दिएर ब्रह्मपर्वतको शिखरमा चढे। उनले धेरै धातु र रत्नले बनेको, कोही जान नसक्ने निषध नाम गरेको शिखरमा गएर कालो फलामको शिवलिङ्ग स्थापना गरी तीर्थको जलले स्नान गराएर यथाविधि अर्चना गरे ॥८७-९०॥

दिव्य आसनमा पूर्व फर्केर बसी सिधा शरीर बनाएर नाकको टुप्पोमा हेर्दै थोरै आँखा उघारेर एकचित्तले ध्यान गरी एक सय वर्षसम्म उनले जप गरे। तिनको जपबाट प्रसन्न भएर वर्षाऋतु सकिएपछि आश्विन शुक्ल सप्तमी (फूलपाती) मा भक्त नैर्ऋतलाई वर दिन भगवान् शिव प्रकट हुनुभयो। महादेवको भक्तिमा तल्लीन महामना महातेजस्वी नैर्ऋतले पनि महादेवको दर्शन पाएर स्तुति गरे ॥९१-९४॥

नैर्ऋतले भन्यो – शान्त स्वरूप भएका, कल्याणमय शरीर धारण गर्नुहुने, शरीरको आधा भागमा पार्वतीलाई धारण गर्नुभएका, परब्रह्मको अंशबाट प्रकट हुनुभएका, पार्वतीको दाहिने अङ्गका रूपमा रहनुभएका, अत्यन्त नीलो घाँटी हुनुभएका, दयाका सागरसमान ती कल्याणमय आद्य शिवतत्वलाई म बारम्बार भजन गर्दछु। ज्ञानस्वरूप हजुरलाई नमस्कार छ, सूक्ष्मरूप धारण गर्नुहुने हजुरलाई नमस्कार छ। ज्ञानका पनि ज्ञानस्वरूप भएका शुद्ध तथा स्थूल रूप लिने हजुरलाई नमस्कार छ। देवताका पनि देवता, दिव्य स्वरूप ग्रहण गर्नुहुने हजुरलाई नमस्कार छ। सबैभन्दा पूज्य परम परमेश्वर हजुरलाई नमस्कार छ ॥९५-९७॥

पर र अपर दुबै नभएका, सबैका पूज्य हजुरलाई नमस्कार छ। प्रकाशमय अङ्ग भएका, नित्य र नित्यरूपका हजुरलाई नमस्कार छ। पूज्यहरूले पनि पुज्ने, पूज्य आत्मा भएका हे पूज्य ! हजुरलाई नमस्कार छ। ज्योतिर्मय नेत्र भएका, दिव्यभावले युक्त तेजस्वी हजुरलाई नमस्कार छ। शक्तिस्वरूप, शान्त र शुद्धिको एकमात्र कारण हजुरलाई नमस्कार छ। निर्मल एवं सेतो वर्ण भएका र सबैभन्दा पवित्र हजुरलाई नमस्कार छ। व्यापकरूपले सबैमा रहने, साक्षीस्वरूप, निराकार हजुरलाई नमस्कार छ ॥९८-१००॥

---

३७. जीविनाम्, इति न.सं.पु.पाठः। ३८. ध्यात्वा ध्यात्वा, इति न.सं.पु.पाठः। ३९. वरदानाय भक्तिने, इति न.सं.पु.पाठः।

कालरूपाय कालाय कान्तदेहाय शम्भवे। व्योमस्थाय प्रमाणाय व्योमरूपाय वै नमः ॥१०१॥
सर्वमन्त्रशरीराय कालकालाय ते नमः। अजाय मन्त्ररूपाय शुद्धदेहाय ते नमः ॥१०२॥
अप्रमाणाय देवाय शङ्कराय नमो नमः। दीप्तनेत्राय साराय साररूपाय ते नमः ॥१०३॥
आद्याय सर्वरूपाय चानन्ताय नमो नमः। अघोराय च घोराय तत्पुरुषाय नमो नमः ॥१०४॥

स्कन्द उवाच

एवं स्तुत्वा महादेवं ननाम च पुनः पुनः। लोमाञ्चनो महावीरो मनोवाक्कायकर्मभिः[४०] ॥१०५॥
स्तोत्रं निशम्य देवेशो नैर्ऋतस्य घटोद्भव। मुमोद च तदा रुद्रो वरं च दत्तवान्विभुः ॥१०६॥

शर्व उवाच

वरं वरय धर्मज्ञ सर्ववरोत्तमं शुभम्[४१]। दास्ये तुभ्यमिदानीं वै यत्त्वं वाञ्छसि राक्षस ॥१०७॥
एकचित्तं समाधाय प्रतपसि तपो वरम्। सुनिश्चलश्च मे भक्तो हिंसाहीनो[४२] जितेन्द्रियः ॥१०८॥
तुष्टोऽहं तपसा वत्स स्तोत्रैः सर्वमनोहरैः। कामदं माञ्च[४३] जानीहि मत्वा वरय मामिति ॥१०९॥

नैर्ऋत उवाच

यदि तुष्टोऽसि सर्वज्ञ मयि क्षुद्रे च साम्प्रतम्। कृपासागर शम्भो मामनुकम्पयसि ध्रुवम् ॥११०॥
दीयतां भगवन्मह्यं दिक्पालत्वं तथाविधम्। यथैव दण्डिने दत्तं भवता च पुरा विभो ॥१११॥

शर्व उवाच

ददामि ते महाबाहो यदुक्तं तत्त्वया ध्रुवम्। तपसा ते कठोरेण तुष्टोऽहञ्च स्तवैस्तथा ॥११२॥
तथाऽस्तु ते महावीर यत्ते मनसि विद्यते। विदिगीशो भवाऽद्यादि पालयँश्च तदुद्भवान् ॥११३॥

---

सबैको संहार गर्ने कालस्वरूप, कालका अधिष्ठाता तथा कालका पनि काल महाकाल हजुरलाई नमस्कार छ। सम्पूर्ण मन्त्रमय सुन्दर शरीर भएका हजुरलाई नमस्कार छ। जन्मरहित हुनाले नित्य एवं मन्त्रमय रूप हुनाले शुद्ध देह भएका हजुरलाई नमस्कार छ। इयत्तारहित अर्थात् अनिर्वचनीय एवं कल्याणकारी देवाधिदेवलाई नमस्कार छ। उज्वल नेत्र भएका, सत्य तथा अमृतमय स्वरूप भएका हजुरलाई नमस्कार छ। सबैभन्दा पहिले प्रादुर्भाव भएका, सर्वस्वरूप, अनन्तलाई बारम्बार नमस्कार छ। अघोर, घोर र तत्पुरुष भगवान्लाई बारम्बार नमस्कार छ॥१०१-१०४॥

कार्तिक स्वामीले भन्नुभयो – रोमाञ्चित हुँदै महावीर नैर्ऋतले मन, वचन, शरीर र कर्मले महादेवको स्तुति गरेर उहाँलाई बारम्बार नमस्कार गऱ्यो। हे अगस्त्य मुनि ! नैर्ऋतले गरेको स्तुति सुनेर देवताका पनि देवता महादेव प्रसन्न हुनुभयो र उनलाई वर दिनुभयो ॥१०५-१०६॥

महादेवले भन्नुभयो – हे धर्मज्ञ राक्षस ! वरहरूमध्ये सबैभन्दा उत्तम वर म तिमीलाई दिन्छु, जे इच्छा लागेको छ त्यो वर माग। तिमीले स्थिर, अहिंसक एवं जितेन्द्रिय भएर एक चित्तले ठूलो तपस्या गऱ्यौ। त्यसैले तिमी मेरा भक्त हौ। हे बाबु ! तिम्रो तपस्या र सबैभन्दा राम्रो स्तुतिले गर्दा म अत्यन्त प्रसन्न भएको छु। मलाई मनमा लागेको कुरा दिन सक्ने ठान र विचार गरेर मसँग इच्छा लागेको वर माग ॥१०७-१०९॥

नैर्ऋतले भने – हे सर्वज्ञ ! हे कृपासागर ! हे शम्भु ! हजुर यदि क्षुद्र मदेखि पनि प्रसन्न हुनुहुन्छ भने ममाथि कृपा गर्नुहोस्। हे सर्वव्यापक भगवान् ! अघि दण्डधारी यमराजलाई हजुरले जस्तो वर दिनुभएको थियो, त्यस्तै दिक्पाल हुन पाउने वर मलाई पनि दिनुहोस् ॥११०-१११॥

महादेवले भन्नुभयो – हे महाबाहु ! तिमीले जे माग्यौ, त्यो कुरा म तिमीलाई अवश्य दिन्छु। तिम्रो स्तुति र कठोर तपस्याले म प्रसन्न भएको छु। तिम्रो मनमा जे लागेको छ, त्यो पूर्ण होस्। आजदेखि तिमी विदिशा अर्थात् दक्षिण र पश्चिम दिशाको बीचका अधिपति भयौ। अब गएर त्यहाँका सबै प्राणीको पालन गर ॥११२-११३॥

---

४०. वाङ्मनोवचनैस्तदा, इति न.सं.पु.पाठः।
४१. सर्ववरमनुत्तमम्, इति न.सं.पु.पाठः।
४२. अहिंसश्च, इति न.सं.पु.पाठः।
४३. मां कामदञ्च, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

एवं दत्वा वरं तस्मै भक्ताय च महात्मने। भक्तानां वत्सलो देवश्चान्तर्द्धानं ततो ययौ ॥११४॥
तत्रागत्य सुराः सर्वे बृहस्पतिमुखास्तदा। ब्रह्मा च नारदश्चैव सप्तर्षयस्तथा परे ॥११५॥
अभिषेकं ददुस्तस्मै हिरण्यकलशैः शुभैः। तीर्थोदकसुसंपूर्णैर्देवहस्तोद्धृतैर्मुने ॥११६॥
नेदुर्दुन्दुभयस्तत्र जयशब्दस्तथाविधः। ववृषुः[४४] सुमनःसारान् लाजासारांश्च नाकतः ॥११७॥
अभिषिच्य ततो देवा मेरोः शृङ्गं[४५] ययुर्मुदा। कृत्वाग्रे नैर्ऋतं तत्र ब्रह्मा च तमरूरूपत् ॥११८॥
सुरास्तमारोप्य ययुर्यथागता विरिञ्चिमुख्या विदिगीशसत्कृताः[४६]।
ततः समाकर्ण्य तपः कृतं तदा। स नैर्ऋतिनाप्यकरोज्जलेश्वरः ॥११९॥

इति श्रीस्कन्दपुराणे हिमवतखण्डे मानस्सरोमाहात्म्ये नैर्ऋततपःसिद्धिर्नाम पञ्चदशोऽध्यायः ॥१५॥

---

कार्तिक स्वामीले भन्नुभयो – यसरी ती महात्मा भक्तलाई वरदान दिएर भक्तवत्सल महादेव त्यहीँ अन्तर्धान हुनुभयो। हे मुनिवर ! त्यहाँ बृहस्पति आदि देवता, ब्रह्मा, नारद तथा सप्तर्षिहरू आएर हातमा बोकेका तीर्थका जलले भरिएका, असल–असल सुनका घडाले ती तपस्वीको अभिषेक गरे। त्यस ठाउँमा नगराहरू घन्किए, जय–जय शब्द भयो। स्वर्गबाट फूल र लावा वर्सिए। अभिषेक गरिसकेपछि देवताहरू नैर्ऋतलाई अगाडि लगाएर सुमेरु पर्वतको शिखरमा गए र ब्रह्माजीले उनलाई नैर्ऋत्य दिशाको अधिपतिका रूपमा स्थापित गरे। नैर्ऋतलाई त्यहाँ स्थापित गरेर ब्रह्मा आदि गरिएका देवताहरू नैर्ऋत्य दिशाका स्वामीबाट सत्कार प्राप्त गरी जुन बाटे आएका थिए, त्यतै गए। त्यसपछि नैर्ऋतले तपस्या गरेको कुरा सुनेर वरुणले पनि तपस्या गरेका थिए ॥११४–११९॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गत हिमवतखण्डको मानसरोवरको माहात्म्य एवं नैर्ऋत्यदिशाको दिक्पालका रूपमा नैर्ऋतिको अभिषेक नामक पन्ध्रौं अध्याय पूर्ण भयो।

---

४४. ववर्षुः, इति न.सं.पु.पाठः। ४५. सानुम्, इति न.सं.पु.पाठः। ४६. आदृताः, इति न.सं.पु.पाठः।

# षोडशोऽध्यायः

सुधातीर्थमहिमा पश्चिमदिशो दक्पालत्वेन वरुणस्याभिषेकश्च

अगस्त्य उवाच

त्रिकालज्ञ महासेन सर्वज्ञोऽसि न संशयः। वरुणेन तपस्तप्तं कठोरञ्च महात्मना ॥१॥
इत्युक्तं भवता मह्यं श्रोतुमिच्छाम्यहञ्च तत्। कोऽसौ देवः प्रचेताश्च केनोपदेशितः प्रभो ॥२॥

स्कन्द उवाच

शृणु भक्त प्रवक्ष्यामि सर्वं तच्चरितं मयि। भक्तोऽसि मे महाप्राज्ञ नारदेनोपदेशितः ॥३॥
आसीत्कश्यपपुत्रोऽसौ वरुणो नाम विश्रुतः। महात्मा च महातेजा महाबलपराक्रमः ॥४॥
सर्वधर्मरतो नित्यं सर्वविद्याविशारदः। विष्णुभक्तः सदा दान्तः शिवपूजनतत्परः ॥५॥
सर्वभूतदयाशीलोऽतिथिपूजनतत्परः[1]। सत्यवादी च धर्मिष्ठो जितेन्द्रियो महामुनिः ॥६॥
कदाचिद्दिवसे पाशी सभामध्ये स्थितो मुने। ददर्श नारदं तत्र गगनादागतं मुनिम् ॥७॥
पर्य्यटन् ब्रह्मलोकाद्वै जटाकलापिनं कविम्। वीणावाद्यमहोल्लासं वादयन्तं मुहुर्मुहुः ॥८॥
सप्तस्वरसदाभ्यासं नवभिश्च रसैर्युतम्। गीततालमहोल्लासं हिरण्ययज्ञसूत्रकम् ॥९॥
रुद्रयशः प्रगायन्तं सूचकं कलहप्रियम्। समदृष्टिं च लोकेषु कथ्याकथ्यसुसूचकम् ॥१०॥
उदतिष्ठत्तमालोक्य पाशी समागतं मुने। सम्पूज्याऽर्घ्यैः स्तवैरर्घ्यं तमासने न्यवेशयत् ॥११॥
कृत्वा प्रदक्षिणं पाशी ननाम च मुहुर्मुहुः। भक्त्या च कुशलं प्रश्नञ्चकार भूरिशो यतिम् ॥१२॥

---

अध्याय- १६

सुधातीर्थको महिमा र पश्चिम दिशाको दिक्पालका रूपमा वरुणको अभिषेक

अगस्त्य मुनिले भन्नुभयो – हे त्रिकालज्ञ ! हे महासेन ! हजुर सर्वज्ञ हुनुहुन्छ, यसमा सन्देह छैन। हजुरले मलाई महात्मा वरुणले कठोर तपस्या गरे भनेर भन्नुभयो। ती वरुण देवता भनेका को हुन् ? तिनलाई कसले उपदेश दियो ? त्यो म सुन्न चाहन्छु ॥१–२॥

कार्तिक स्वामीले भन्नुभयो – हे महाबुद्धिमान् अगस्त्य मुनि ! तपाईं मेरा भक्त हुनुहुन्छ। त्यसैले वरुणको सबै चरित्र म तपाईंलाई बताउँछु, सुन्नुहोस्। वरुणलाई नारदले उपदेश दिएका हुन्। ठूला तेज भएका, ठूलो बल र पराक्रमले युक्त भएका यी महात्मा कश्यपका पुत्र थिए। उनी सबै विद्यामा पारङ्गत, सधैं सबै धर्ममा श्रद्धा गर्ने, विष्णुभक्त एवं दानी ती वरुण सधैं शिवको पूजा गर्दथे। ती महामुनि वरुणको सबै प्राणीमाथि दया गर्दथे। नित्य पाहुनाको सत्कार गर्न उनी सत्यवादी धर्मात्मा र जितेन्द्रिय पनि थिए ॥३–६॥

हे अगस्त्य मुनि ! एक दिन सभाको बीचमा बसिरहेका बेलामा ती वरुणले ब्रह्मलोकबाट घुम्दै–घुम्दै आकाशमार्गबाट आउन लागेका, जटाको जुरो बाँधेका कवि नारदमुनिलाई देखे। उनी वीणा बजाउँदै आनन्द लिइरहेका थिए। सातै स्वरको अभ्यासमा संलग्न थिए, नवै रसले युक्त भएका गीत र तालमा मस्त देखिन्थे। उनले सुनको यज्ञोपवीत (जनै) पहिरिएका थिए रशिवजीको महिमा गाइरहेका थिए। भन्न हुने, नहुने सबै कुरा लगाइदिएर छुल्याइँ गरे तापनि उनी लोकमा सबैलाई एकनासले हेर्दथे ॥७–१०॥

हे मुनि ! आउन लागेका नारदलाई देखेर जुरुक्क उठी वरुणले उनलाई अर्घ्य र स्तुतिहरूले राम्ररी पूजा गरेर आसनमा बसाले। त्यसपछि वरुणले दाहिने पारी नारदलाई बारम्बार प्रदक्षिणा गरेर भक्तिपूर्वक नमस्कार गरे अनि कुशलतासम्बन्धी प्रश्नहरू गरे ॥११–१२॥

---

१. शीलश्चातिथ्यार्हणतत्परः, इति न.सं.पु.पाठः।

वरुण उवाच

अहोभाग्यमहोभाग्यमनाथस्य सनाथता। भवेदद्याऽऽर्य्य महती यतो भवानिहागतः ॥१३॥
अद्य पूतं ममाऽङ्गं यदद्यैव पितरो मुदा। भुञ्जते दत्तमद्यैव प्राक्कृतं सफलं भवेत् ॥१४॥
भवतः किङ्करोऽहं वै यत्कार्यार्थमिहागतः। वार्त्ता च बोध्यतामार्य[२] किङ्करोमि विधीयताम् ॥१५॥

नारद उवाच

न वक्तव्यं त्वयैवं मे श्रेष्ठ कश्यपसूनुना। सत्यसन्धश्च धर्मात्मा दान्तोऽसि सर्वजन्तुषु ॥१६॥
विष्णुभक्तः शिवात्मा त्वं मम तुल्यो न संशयः। यो हि धर्मरतो नित्यं शिवपूजनतत्परः ॥१७॥
सम्पूज्यः सर्वलोकैश्च स एव हि नरोत्तमः। स मान्यः सर्वभूतानां तपोमूर्तिः स एव हि ॥१८॥
विष्णुना मे पुरा प्रोक्तं रुद्रेण च तथाविधम्। मम भक्तश्च मे मूर्तिः स्यान्नारद न संशयः ॥१९॥
यत्किञ्चिच्छ्रद्धया दत्तं भोजनं वा वसूनि च। मद्भक्ताय सुधर्मिष्ठैर्गृह्णामि तन्मुने ध्रुवम् ॥२०॥
इत्येवं वर्णितं मह्यं तथा रुद्रेण विष्णुना। तदादि वरुण प्राज्ञ तद्भक्तभक्तिमानहम्[३] ॥२१॥
ममाऽऽगमनकार्य्यं ते वक्ष्यामि शृणु विस्तरम्। हिमवच्छिखरे रम्ये नैर्ऋतिन तपः कृतम् ॥२२॥
एकचित्तं समाधाय कठोरं सुमहत्तपः। दिव्यवर्षशतं साग्रं प्रतप्तं च महात्मना ॥२३॥
बभूव भगवाँस्तुष्टस्तत्रागत्य जलाधिप। ददौ महावरं तस्मै भगवान् भूतभावनः ॥२४॥
दिक्पालत्वं तथाऽन्यच्च महाबलं पराक्रमम्। विदिगीशोऽभवन्[४] मेरौ हर्त्ता कर्त्ता स एव हि ॥२५॥
इति वार्त्तां समादाय आगतोऽहं तवाऽन्तिके। धर्मिष्ठाय हि भक्ताय तुभ्यं वक्तुञ्च नाऽन्यथा ॥२६॥

---

वरुणले भने – अहो मेरो भाग्य ! अहो मेरो भाग्य ! हजुर यहाँ आइदिनुभएकाले अनाथ भएर पनि सनाथ भएको छु। आज मेरा सारा अङ्ग पवित्र भएका छन् भने पितृहरू पनि मैले दिएको अन्न खुसी भएर खाँदैछन्। मैले पहिले गरेका सम्पूर्ण कर्म आजसफल भएका छन्। हे आर्य ! म हजुरको सेवक हुँ। हजुर यहाँ के काम लिएर आउनुभएको हो ? मैले के गर्नुपर्‍यो ? मलाई निर्देशन दिनुहोस् ॥१३-१५॥

नारदले भने – हे श्रेष्ठ ! कश्यपका पुत्र भएर पनि तपाईंले मलाई यस्तो भन्नु राम्रो होइन। धर्मात्मा तपाईं सबै प्राणीहरूका उपकारक र सत्यनिष्ठ हुनुहुन्छ। विष्णुका भक्त, शिवस्वरूप तपाईं मसमान हुनुहुन्छ, यसमा सन्देह छैन। जो नित्य धर्ममा लागेको र सदा शिवजीको पूजा गर्न तत्पर छ, त्यो सम्पूर्ण प्राणीहरूका लागि पूज्य हुन्छ। सबै मानिसमा श्रेष्ठ मानिने त्यो व्यक्तिसम्पूर्ण प्राणीहरूको मान्यसमेत हुन्छ। त्यो निःसन्देह तपस्याको मूर्ति नै हो ॥१४-१८॥

हे वरुण ! मेरो भक्त मेरै मूर्ति हुन्छ, यसमा शङ्का छैन भनेर विष्णु र शिवले मलाई पहिले भन्नुभएको थियो। हे मुनि ! धर्मात्माहरूले श्रद्धा गरेर मेरा भक्तहरूलाई जे खाने कुरा र धन दिन्छन्, निश्चय नै त्यो सबै म ग्रहण गर्दछु। यसरी मलाई भगवान् शिवजी र विष्णुले भन्नुभएको थियो। हे बुद्धिमान् वरुण ! त्यसै समयदेखि मैले उहाँका भक्तहरूको भक्ति गर्न थालेको छु। म यहाँ आउनुको प्रयोजन तपाईंलाई सविस्तार बताउँछु, सुन्नुहोस्। महात्मा नैर्ऋतले हिमालयको रम्यशिखरमा बसेर एकचित्त भएर दिव्य एक सय वर्षसम्म ठूलो र कठिन तपस्या गरे। हे वरुण ! त्यस तपस्याबाट प्रसन्न भएर भगवान् शङ्करले उनलाई ठूलो वर दिनुभयो ॥१९-२४॥

ती नैर्ऋतलाई भगवान् शङ्करले अत्यन्त बल र पराक्रमका साथ दिक्पाल बनाएर नैर्ऋत्य दिशाका अधिपति बन्न भन्नुभयो। उनी अहिले सुमेरुको दक्षिण-पश्चिम अर्थात् नैर्ऋत्य कोणका अधिपति तथा हर्ताकर्ता भएर रहेका छन्। यही कुरा लिएर म तपाईं भएको ठाउँमा आएको हुँ। तपाईं धर्मात्मा र भक्त भएकाले तपाईंलाई त्यो कुरा सुनाऊँ भनेर मात्र आएको हुँ, अरू कार्यविशेषले आएको होइन ॥२५-२६॥

---

२. वार्त्तां प्रबोधितश्चार्य, इति न.सं.पु.पाठः। ३. भक्तिवानहम्, इति न.सं.पु.पाठः। ४. भव, इति न.सं.पु.पाठः।

वरुण उवाच

अहो चित्रं महानत्र यतो लब्धञ्च रक्षसा। विदिक्पाल्यं मुनिश्रैष्ठ्यं सर्वोन्नतबलं तथा ॥२७॥
स्वात्मोद्धरणहैतुक्यं[५] तपोबलं तपस्विनाम्। स्वार्थयुक्तेन तपसा सन्तुष्टो भगवान् कथम् ॥२८॥

नारद उवाच

तपसा लभ्यते धर्मस्तपसा नृकलेवरम्। तपसा प्राप्यते भूतिर्देवदेहस्तथा पुनः ॥२९॥
तपसा लभ्यते मोक्षोऽह्यकामेन[७] यदा चरेद्। तपसा लभ्यते स्वर्गो लक्ष्मीश्च तपसा तथा ॥
मेदिनीशपदं पुत्रः तपसा लभ्यते जगत् ॥३०॥
तपसा प्राप्यते सर्वं सुदुर्ल्लभं न विद्यते। तपसा भगवान् रुद्रो वश्यो विष्णुस्तथाविधः ॥३१॥
जगच्च तपसा वश्यं किं पुनः क्षुद्रमानुषाः। कांक्षा चेद्भवतो वत्स क्रियतां दुश्चरं तपः ॥३२॥
हिमवच्छिखरे दिव्ये कृत्वा वाञ्छा प्रलभ्यते।

वरुण उवाच

ममापि विद्यते कामस्तपस्तप्तुञ्च नारद ॥३३॥
कस्मिन्स्थाने महाक्षेत्रे कस्मिँस्तीर्थे पुनर्विभो। कथ्यतां मे महाप्राज्ञ ह्यञ्जसा स्नेहपूर्वकम्[८] ॥३४॥
तपसश्च विधिः सर्वः तपस्विन्सर्वविन्मुने।

नारद उवाच

हिमवत्पश्चिमे शृङ्गे त्रिकूटाख्ये सुशोभने ॥३५॥
गङ्गासुधातरङ्गिण्योर्मध्ये तीर्थे च कामदे। तत्र स्नानाद् दिवं यान्ति सदेहा नात्र संशयः ॥३६॥
पूजयन्ति सुराः स्वर्गे स्नातकमर्हणैश्च तम्। धन्योऽसि कृतकृत्योऽसि सुधातीर्थे महातपाः ॥३७॥
आप्लुत्य विधिवत् वत्स सदेहोऽत्र समागतः। एवं वदन्ति देवा वै स्वर्गे च वरुणाऽनिशम् ॥३८॥
यदि वाञ्छसि हे पाशिन् तत्र चाऽऽराधयेश्वरम्। त्वमपि तस्मिन्नाप्लुत्य त्रिकूटपर्वते ततः ॥३९॥
स्थापितं कुरु वै लिङ्गं यदृच्छया जपं कुरु।

---

वरुणले भने – हे मुनिराज ! राक्षस दिक्पाल हुन पाउनु ज्यादै आश्चर्यको कुरा भयो। त्यसमाथि उसले सबैभन्दा बढी सामर्थ्य पनि प्राप्त गरेको छ। तपस्या गर्ने तपस्वीहरूको तपोबल त आफ्नो आत्माको उद्धारका लागि हो तर हजुरले त स्वार्थवश गरिएको तपस्यासम्बन्धी वृत्तान्त बताउनुभयो, त्यो कसरीश्रेष्ठ तपस्या भयो ? ॥२७–२८॥

नारदले भने – तपस्याद्वारा धर्म, श्रेष्ठ मनुष्यजीवनएवं सम्पूर्ण ऐश्वर्य प्राप्त हुन्छ। यस्तै तपस्याकै कारण देवताको शरीर प्राप्त हुनुका साथैस्वर्ग पनि उपलब्ध हुन्छ। लक्ष्मीलाई पनि तपस्याद्वारा नै प्राप्त गर्न सकिन्छ र राजा पनि तपस्याकै कारण भइन्छ। यसैगरी तपस्याले सन्तानसमेत प्राप्त गराउनुका साथैसम्पूर्ण संसार नै प्राप्त गर्न सकिन्छ। तपस्याद्वारा सारा कुरा प्राप्त हुन्छ, नपाइने केही हुँदैन। तपस्याद्वारा नै भगवान् शङ्कर तथा विष्णुलाई पनि आफ्नो वशमा पार्न सकिन्छ। तपस्याद्वारा संसारलाई नै वशमा पार्न सकिन्छ भने तुच्छ मानिसको त के कुरा ? हे बाबु ! तिमीलाई पनि इच्छा छ भने कठोर तपस्या गर। हिमालयको काखमा गएर तपस्या गर्दा सम्पूर्ण इच्छित फल प्राप्त गर्न सकिन्छ ॥२९–३२½॥

वरुणले भने – हे बुद्धिमान् नारदजी ! हे सर्वज्ञ ! म पनि तपस्या गर्न इच्छुक छु, तर कुन ठाउँमा, कुन क्षेत्रमा र कुन तीर्थमा तपस्या गर्नुपर्छ ? तपस्या गर्ने विधि के हो ? हे तपस्वी ! मलाई सविस्तार बताउनुहोस् ॥३३–३४½॥

नारदले भने – हिमालयको पश्चिम शिखरमा त्रिकूट भन्ने सुन्दर ठाउँमा गङ्गाजी र सुधा नदीको बीचमा कामद (चिताएको कुरा दिने) नामक तीर्थ छ। त्यस तीर्थमा स्नान गर्ने मनुष्यहरू सशरीर स्वर्ग जान्छन्, यसमा सन्देह छैन। हे बाबु वरुण ! त्यहाँ स्नान गर्ने व्यक्तिलाईसारा देवताले स्वर्गमा पनि पूजा गर्छन् ।त्यस्ता व्यक्तिलाई देवताहरूले स्वर्गमा हे श्रेष्ठ तपस्वी ! तिमी धन्य रहेछौ, तिमीले गर्नुपर्ने काम गर्‍यौ, सुधातीर्थमा विधिपूर्वक स्नान गरेर तिमी सशरीर यस स्थानमा आइपुगेका छौ भनेर भन्छन्। तिमीलाई पनि त्यस्तै इच्छा छ भने त्यस स्थानमा गएर शिवजीको आराधना गर। त्रिकूट पर्वतको त्यस तीर्थमा स्नान गरेर शिवलिङ्गको स्थापना गरेर इच्छा अनुसार जप गर ॥३५–३९½॥

---

५. स्वात्मोधारणहेतुक्यम्, इति न.सं.पु.पाठः।
६. मस्वार्थेन तपसा प्रोक्तं भगवान् तुष्टवान् कथम्, इति न.सं.पु.पाठः।
७. मोक्षमकामेन, इति न.सं.पु.पाठः।
८. अञ्जसा पूर्वकञ्च यत्, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

इत्युक्त्वा नारदो धीरस्तत्रैवाऽन्तरधीयत ॥४०॥
वरुणोऽपि ययौ तत्र सुधातीर्थे ध्रुवं मुदा। सस्नौ तत्र महातीर्थे विमले पापहारिणि ॥४१॥
सत्त्वानां दुर्ल्लभे पूते सर्वतीर्थोत्तमोत्तमे। विधिवच्च महाप्राज्ञो विभूत्या भूषितस्तनौ[९] ॥४२॥
रुद्राक्षांश्च दधौ मन्त्री रुद्रं स्मरन् धिया पुनः। ततो दायान्ददौ धीमान् विप्रेभ्यो हि घटोद्भव ॥४३॥
आरुरोह गिरिं पाशी[१०] त्रिकूटाख्यं महाचलम्। तत्र कूटे महाशृङ्गे चाभ्रंलिहि स्थलोत्तमे ॥४४॥
स्फाटिकं निर्मितं लिङ्गञ्चक्रे संस्थापनं मुदा। दिव्यासने समासीनो भूत्वा च प्राङ्मुखस्ततः ॥४५॥
अपूपुजन्मुदा लिङ्गं तीर्थोदकैः समर्हणैः। दिव्यवर्षशतं साग्रं ततो जजाप निश्चलः ॥४६॥
वर्षान्ते भगवान् रुद्र आविर्भूतश्च ह्यम्बरात्। सन्दृश्य शङ्करं पाशी ज्योतीरूपं विभूतिदम् ॥४७॥
लोमहर्षतनुस्तस्मै स्तवं चक्रे तदा मुने।

वरुण उवाच

ॐ नमो रुद्राय देवाय रौद्राणां पतये नमः ॥४८॥
शक्रोत्सवविधात्रे च कृपीटमूर्त्तये नमः। नमो हराय चोग्राय कृतान्तेच्छाफलप्रद ॥४९॥
कालेश्वराय कालाय कालातीताय वै नमः। नमस्त्र्यक्षाय भीमाय व्योमकेशाय ते नमः ॥५०॥
कबूरिश्वरदेवाय कौणपवाञ्छितप्रद। नमोऽजाय च देवाय स्थाण्वीश्वराय शम्भवे ॥५१॥

---

कार्तिक स्वामीले भन्नुभयो – हे धीर ! यति भनेर नारदजी त्यहीँ अन्तर्धान हुनुभयो। वरुण पनि प्रसन्न भएर पाप हरण गर्ने, पवित्र, प्राणीहरूका निम्ति दुर्लभ, श्रेष्ठ तीर्थहरूमा पनि श्रेष्ठ महातीर्थ भएको सुधातीर्थमा गएर स्नान गरे। त्यसपछि महाबुद्धिमान् वरुणले शरीरभरि विधिपूर्वक विभूति लगाए। हे अगस्त्य मुनि ! त्यसपछि उनले मनमनै महादेवलाई सम्झँदै रुद्राक्ष धारण गरे र ब्राह्मणहरूलाई दान दिए ॥४०-४३॥

त्यसपछि वरुण त्रिकूट नाम गरेको विशाल पर्वतमा उक्लिए। बादललाई छुने किसिमको अर्थात् अत्यन्त अग्लो त्यस शिखरको टाकुरामा रहेको सुन्दर स्थानमा स्फटिकमणिको शिवलिङ्ग बनाई स्थापना गरे र पूर्व फर्किएर तीर्थको जलले त्यस लिङ्गको पूजा गरे। अनि दृढ भएर दिव्य एक सय वर्षभन्दा बढी समयसम्म जप गरेर बसे।त्यसै वर्षको अन्त्यमा भगवान् शङ्कर आकाशबाट प्रकट हुनुभयो। ऐश्वर्यसम्पन्न त्यस्तो ज्योतिस्वरूपलाई देखेर रोमाञ्चित हुँदै वरुणले भगवान्को स्तुति गरे ॥४४-४७॥

वरुणले भने – रुद्रगणका पति रुद्रदेवलाई नमस्कार छ, इन्द्रलाई मङ्गल दिने कृपीटमूर्तिलाई नमस्कार छ, यमराजलाई इच्छा लागेको फल दिने उग्रस्वरूप हरलाई नमस्कार छ, कालका स्वामी कालस्वरूप र अतीतकालका पनि काल हजुरलाई नमस्कार छ, तीन नेत्र भएका भीषण मूर्ति लिने व्योमकेश हजुरलाई बारम्बार नमस्कार छ। राक्षसराजका देवता नैर्ऋतलाई अभीष्ट वर दिने हे ईश्वर ! देवता, स्थाणु र कूटस्थस्वरूप भएका हजुरलाई नमस्कार छ ॥४८-५१॥

---

९. विभूतिभूषितस्तनु, इति न.सं.पु.पाठः। १०. ततोऽरुहद्गिरिं पाशी, इति न.सं.पु.पाठः।

ईशानाय शिवाङ्गाय शाश्वताय[११] नमो नमः। अर्घ्याय पूज्यदेहाय संसारदाय वै नमः ॥५२॥
सर्वज्ञाय च सर्वाय लोकानां पतये नमः। सर्वव्याधिहरेशान निःश्रेयसाय ते नमः ॥५३॥
भद्राय भद्रदेहाय भूतेश्वराय ते नमः। नमः शिवाय भर्गाय जातवेदःफलप्रद ॥५४॥
कृपीटयोनिदेवाय शक्रेश्वराय वै नमः। नमो मङ्गलरूपाय अकालमृत्युनाशिने ॥५५॥
मृत्युञ्जयाय रुद्राय शूलहस्ताय वै नमः। दिव्यरूपाय देवाय दिव्यानां पतये नमः ॥५६॥
वराभयप्रदात्रे च शान्तदेहाय वै नमः। नमः शिवप्रदानाय[१२] शिवमार्गप्रदेशिने ॥५७॥
संसारसारदेवाय शम्भवे ते नमो[१३] नमः।

स्कन्द उवाच

इत्याकर्ण्य महादेवः स्तवं स्तवोत्तमं परम् ॥५८॥
वरुणेन स्तुतं श्रुत्वा भक्ताय हर्षदोऽभवत्[१४]। वरदानाय देवेशो भक्ताय भक्तवत्सलः ॥५९॥
उवाच वचनं तस्मै सर्वभूतगुहाविशः।

शर्व उवाच

वरं वरय धर्मज्ञ वरुण मम भक्तिवित् ॥६०॥
ज्ञात्वा मां सर्वदं वत्स सर्वदा भक्तवत्सलम्[१५]। ते भक्त्याऽहं समाहूतः प्रेरितस्तपसाऽत्र च ॥६१॥
ददाम्यहं वरं तुभ्यं यत्त्वं वाञ्छसि साम्प्रतम्।

वरुण उवाच

अहोभाग्यमनाथस्य ममैवाऽद्य फलं भवेत् ॥६२॥
यतः प्राकाशयत्तेजो ज्योतिरूपकलेवरः। यदि भवेत् मयि स्नेहः सर्वदेवनमस्कृत ॥६३॥

---

ईशान र मङ्गलमय शरीर भएका नित्यस्वरूप हजुरलाई बारम्बार नमस्कार छ। पूज्य, पूज्य शरीर भएका र संसारको संहार गर्ने हजुरलाई नमस्कार छ। सर्वज्ञ, सर्व र सबै लोकका पतिलाई नमस्कार छ, सम्पूर्ण रोगव्याधि हरण गर्ने मङ्गलस्वरूप हे ईश्वर ! हजुरलाई नमस्कार छ। कल्याणस्वरूप भएका, भव्य शरीरधारी भूतेश्वर हजुरलाई नमस्कार छ। अग्निलाई फल दिने र तेजोरूप लिने शिवलाई नमस्कार छ। अग्निका देवता र इन्द्रका अधिपति हजुरलाई नमस्कार छ। अकालमृत्यु नाश गर्ने, मङ्गलमूर्ति र हातमा त्रिशूल लिने मृत्युञ्जय रुद्रलाई नमस्कार छ। दिव्यरूप भएका देवताका पतिलाई नमस्कार छ। अभयदान दिने शान्तस्वरूप भएका हजुरलाई नमस्कार छ। कल्याणको मार्ग देखाउने, शिवबाट जन्मिएका संसारका सारभूत देवता भएका शम्भुलाई बारम्बार नमस्कार छ ॥५२-५७½॥

कार्तिक स्वामीले भन्नुभयो – हे बुद्धिमान् अगस्त्य मुनि ! यसरी वरुणले गरेको स्तोत्रहरूमा पनि उत्तम स्तोत्र सुनेर आफ्ना भक्तमाथि महादेव प्रसन्न हुनुभयो र सारा प्राणीको हृदयको गुफामा वास गर्ने देवदेव भक्तवत्सल महादेवले वरुणलाई वर दिनका लागि भन्नुभयो ॥५८-५९॥

महादेवले भन्नुभयो – हे धर्मज्ञ वरुण ! हे बाबु ! म भक्तमाथि अत्यन्त स्नेह गर्छु र सबै कुरा दिन सक्छु भन्ने ठानेर मसँग जे चाहन्छौ, त्यो वर माग। तिम्रो तपस्याबाट प्रेरित भई तिम्रो भक्तिद्वारा बोलाइएर म यहाँ आएको छु ॥६०-६१½॥

वरुणले भने – हे महाप्रभो ! म अनाथको ठूलो भाग्य रहेछ। मैले आज ठूलो फल प्राप्त गरेँ किनभने हजुरले ज्योतिस्वरूप भएको आफ्नो शरीरको दर्शन दिनुभयो। हे सम्पूर्ण देवताहरूबाट वन्दित परमेश्वर ! यदि ममाथि हजुरको स्नेह छ भने नैर्ऋतले तपस्या गरेर जुन फल पाए, त्यस्तै फल मलाई पनि दिनुहोस् ॥६२-६३½॥

---

११. शाश्वते ते, इति न.सं.पु.पाठः। १२. प्रदत्ताय, इति न.सं.पु.पाठः। १३. शम्भो ते सततम्, इति न.सं.पु.पाठः।
१४. धीमन् हर्षञ्चक्रे स्वभक्तिने, इति न.सं.पु.पाठः। १५. मयि सुभक्तवत्सले, इति न.सं.पु.पाठः।

नैर्ऋतेन च यल्लब्धं तन्मे देहि महाविभो।

शर्व उवाच

भवता वाञ्छितं कर्म्म तपसा भावितात्मना ॥६४॥

तत्तथास्तु वरस्तुभ्यं सर्ववरेष्वनुत्तमः[१६] । अद्यप्रभृति चाऽऽर्य्य त्वं प्राच्यां मेरोर्हि तिष्ठसि ॥६५॥

हर्त्ता कर्त्ता तथा पालो भविष्यसि न संशयः।

स्कन्द उवाच

इति दत्त्वा वरं तस्मै भगवान् भूतभावनः ॥६६॥

अन्तर्धानं ययौ शीघ्रं यथाऽऽगतोऽम्बरात् तथा। ततो देवाः सगन्धर्वाः शक्राग्निशमनास्तथा ॥६७॥

आययुस्तत्र ब्रह्मा च राक्षसाश्चाप्सरोगणाः। मुनयो ददृशुस्तत्र वरुणं वै तपस्विनम् ॥६८॥

लब्धवरं महात्मानं चिन्तयन्तं महाविभुम्। तीर्थोदकं समानीय सुधातीर्थोद्भवं ततः ॥६९॥

अभ्यषिञ्चत आर्य्यैः स हिरण्यकलशैः शुभैः। देवैः स्तवैर्ज्जयशब्दैर्देवद्विजमुखोद्भवैः ॥७०॥

नानावाद्योद्भवैर्नादैर्वंशतालघनस्वनैः। ततो ब्रह्मा पठन् वेदानभिषेकं ददौ पुनः ॥७१॥

सप्तर्षयो गुरुः सिद्धाः स्मरन्तस्ते मुदा मनुम्। ततो भूयोऽन्तरिक्षाद्वै जगाद[१७] वचनं विभुः ॥७२॥

अपांपतिर्भवाऽद्यादि वरुण मद्वचो यथा। श्रुत्वेति वचनं देवा व्योमज्योतिःस्वरूपिणः[१८] ॥७३॥

जयशब्दं पुनश्चक्रुः साधु साध्विति वादिनः। ववृषुः[१९] पुष्पवर्षाणि लाजासारांस्तथाप्सराः ॥७४॥

ननृतुश्च जगुर्देव्यो मुमुदुस्तत्र देवताः।

---

महादेवले भन्नुभयो – तिमीले ममाथि चित्त लगाएर तपस्या गरेको हुनाले इच्छा अनुसारको सबैभन्दा उत्तम वर म तिमीलाई दिन्छु। हे आर्य ! आजदेखि तिमी पश्चिम सुमेरुका हर्ता, कर्ता र भर्ता भएर रहनेछौ, यसमा शङ्का छैन ॥६४–६५½॥

कार्तिक स्वामीले भन्नुभयो – वरुणलाई यस्तो वर दिएर भूतभावन भगवान् जसरी आकाशबाट आउनुभएको थियो, त्यसैगरी अन्तर्धान हुनुभयो। त्यसपछि त्यस स्थानमा इन्द्र, अग्नि, यमराज, देवता, गन्धर्व, ब्रह्मा, राक्षस, अप्सरा र ऋषिमुनिहरू सबै आए। ऋषिमुनि लगायत सबै देवताहरूले त्यस स्थानमा शिवजीबाट वर प्राप्त गरेका र महाप्रभुको चिन्तनमा तत्पर तपस्वी वरुणलाई देखे। देवताहरूले सुधातीर्थको तीर्थजल ल्याएर मङ्गलमय सुनका कलशहरूद्वारा वरुणको अभिषेक गरे ॥६६–६९½॥

त्यसबेला देवर्षिहरूका मुखबाट निस्किएका जय जय शब्दहरू, स्तोत्रहरू, अनेक किसिमका बाजाका आवाज, बाँसुरी र करतालका ध्वनिहरू घन्किएका थिए। त्यसपछि ब्रह्माजीले वेदपाठ गर्दै अभिषेक गर्नुभयो। सप्तऋषि, बृहस्पति र सिद्धहरूले पनि मन्त्र स्मरण गर्दै जप्दै खुसी भएर उनको अभिषेक गरे। त्यसपछि महादेवले आकाशबाट भन्नुभयो अर्थात् आकाशवाणी भयो – हे वरुण ! मेरो निर्देशन अनुसार आजदेखि तिमी जलतत्त्वका पनि अधिपति भयौ ॥७०–७२½॥

हे वरुण मेरो निर्देशनअनुसार आजैदेखि तिमी जलतत्त्वका पनि अधिपति हुनेछौ आकाशमा रहेको ज्योतिस्वरूप महादेवको यस्तो वचन सुनेर देवताहरूले फेरि साधु साधु भन्दै जय-जयकार गरे र फूल तथा लावाको वर्षा गरे। अप्सराहरू नाच्न थाले, देवीहरू गीत गाउन थाले, देवताहरू आनन्दित भए ॥७३–७४½॥

---

१६. सर्ववरमनुत्तमम्, इति न.सं.पु.पाठः।
१७. उवाच, इति न.सं.पु.पाठः।
१८. व्योमस्थतेजसस्तनोः, इति न.सं.पु.पाठः।
१९. ववर्षुः, इति न.सं.पु.पाठः।

ततो ययुः सुराः सर्वे पुरोधाय तपस्विनम् ॥७५॥

पश्चिमायां दिशि विप्र[२०] वरुणञ्च सुमङ्गलैः । मेरुसानुनि संस्थाप्य[२१] चाऽधिकारं ददौ विधिः ॥७६॥

अन्तर्दधे ततो ब्रह्मा देवर्षयस्तथैव च ।

तदादि पाशी दिशि पश्चिमायां[२२] बभूव[२३] कर्त्ता ह्यविता च हर्त्ता ।

तथाविधं गन्धवहोऽपि चक्रे तपः कठोरं स सुदुश्चरं यत् ॥७७॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे सुधातीर्थमाहात्म्ये वरुणतपःसिद्धिर्नाम षोडशोऽध्यायः ॥१६॥

---

त्यसपछि सबै देवताहरू मङ्गलध्वनि गर्दै ती तपस्वी वरुणलाई पश्चिम दिशामा लिएर गए। ब्रह्माले वरुणलाई सुमेरु पर्वतको शिखरमा राखेर सबै अधिकार दिनुभयो। त्यसपछि त्यहाँ आएका ब्रह्मा, देवता तथा ऋषिहरू अन्तर्धान भए ॥७३–७६॥

त्यसै दिनदेखि वरुण पश्चिम दिशाका हर्ता, कर्ता र लोकपाल भएर रहे। वरुणले तपस्या गरेपछि वायुले पनि त्यसैगरी कठोर तपस्या गरे ॥७७॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा सुधातीर्थको माहात्म्य तथा पश्चिम दिशाको दिक्पालका रूपमा वरुणको अभिषेक नामक सोह्रौं अध्याय पूर्ण भयो।

---

२०. पश्चिमे दिशि विप्रेन्द्र, इति न.सं.पु.पाठः।

२१. मेरोः सानौ तमास्थाय, इति न.सं.पु.पाठः।

२२. पश्चिमे वै, इति न.सं.पु.पाठः।

२३. भवेच्च, इति न.सं.पु.पाठः।

# सप्तदशोऽध्यायः

वायुदेवताविर्भावप्रसङ्गः

अगस्त्य उवाच

त्वन्मुखाभोजसम्भूतं स्कन्द शब्दसुधारसम्। पीत्वा कर्णपुटेनाऽपि न तृप्यामि तृषाऽऽर्दितः[1] ॥१॥
विजृम्भते मनो मेऽद्य पानाय शक्तिधृक्पुनः। त्वन्मुखान्निःसृतस्याऽर्य घर्म्मार्त्तः सलिलं यथा ॥२॥
कोऽसौ वायुर्महातेजाः कस्य पुत्रो महाबली। तपस्तेपे कठोरं वै लब्धवान् कं[2] वरोत्तमम् ॥३॥
कस्मिन्स्थाने महासेन तीर्थे बहुफलप्रदे। इदानीं श्रोतुमिच्छामि वद मे त्वं यथाविधि ॥४॥

स्कन्द उवाच

साधु पृष्टं महाभाग वायोर्वृत्तान्तमेवच। उत्तरं तव प्रश्नस्य संविधास्यामि साम्प्रतम्[3] ॥५॥
आसीद्दितिर्महासाध्वी कश्यपस्य महामुनेः। भार्य्या तपस्विनी धीरा सुखिनी बहुपुत्रिणी[4] ॥६॥
देवासुरे महायुद्धे तस्याः पुत्रान् शचीपतिः। जघान सकलान् वीरान् ततः शोकातुराऽभवत् ॥७॥
इर्ष्यया सा ततः साध्वी पुत्रहन्तुः शचीपतेः। सतीव्रतं तपश्चक्रे शक्रनाशस्य हेतुतः[5] ॥८॥
ततः सा तोषयामास कश्यपं स्नातकं पतिम्। वरं वव्रे ततः साध्वी पुत्रनिधनकर्शिता ॥९॥

दितिरुवाच

भगवन् प्रिय धर्मज्ञ यदि स्नेहोऽस्ति मे विभो। याचेऽहं त्वां वरं शुभ्रं शक्रनाशस्य हेतुकम् ॥१०॥
देहि मे प्रिय तं पुत्रं सर्वोन्नतपराक्रमम्। हनिष्यति च यः शक्रं मम पुत्रनिषूदनम् ॥११॥

---

## अध्याय- १७

### सुधातीर्थमाहात्म्य एवं वायुको उत्पत्तिवर्णन

अगस्त्य ऋषिले भन्नुभयो – हे कार्तिक स्वामी ! हजुरको मुखारविन्दबाट निस्केको वचनरूपी अमृतको रस कर्णकुहरबाट पिउँदा पनि मेरो प्यास मेटिएन, म तृप्त भएको छैन। हे शक्तिशाली कार्तिक स्वामी ! घामले तिर्खाएको व्यक्ति पानी पिउन लालायित भएझैँ हजुरको मुखबाट निस्किएको रस पिउन मेरो मन अझै लालायित छ। हे महासेन ! ती महातेजस्वी महाबली वायु भनेका को हुन् ? कसका छोरा हुन् ? तिनले कुन ठाउँमा त्यस्तो धेरै फल दिने, कुन तीर्थमा कस्तो कठोर तपस्या गरे ? कस्तो उत्तम वर प्राप्त गरे? म त्यो सुन्न चाहन्छु, विस्तारपूर्वक मलाई बताउनुहोस् ॥१–४॥

कार्तिक स्वामीले भन्नुभयो – हे महाभाग ! हे मुनि ! हजुरले वायुको जुन वृत्तान्त सोध्नुभयो, त्यो राम्रो कुरा हो। अब म हजुरले अहिले सोध्नुभएको वृत्तान्त बताउँछु, सुन्नुहोस्। हे महामुनि ! कश्यपकी दिति नाम गरेकी बहुपुत्रवती पतिव्रता पत्नी थिइन्। उनी तपस्विनी र सुखी थिइन्। इन्द्रले देवासुरङ्ग्राममा उनका वीर छोराहरूलाई मारे। त्यसबाट दिति ठूलो शोकमा परिन्। त्यसपछि आफ्ना छोरा मारेको ईर्ष्याले इन्द्रलाई नाश गर्न ती पतिव्रता कश्यपकी पत्नीले पतिव्रता व्रतनामक व्रत लिएर तपस्या गरिन्। त्यसपछि आफ्ना पुत्रका मृत्युले दुःखी भएकी पतिव्रता दितिले भर्खरै स्नान गरेर बसेका आफ्ना पति कश्यपलाई प्रसन्न बनाइन् र वर मागिन् ॥५–९॥

दितिले भनिन्– हे भगवन् ! हे प्यारा ! हे धर्मज्ञ ! हे प्रभो ! म हजुरसँग इन्द्रलाई संहार गर्ने कारण बनेको वरमाग्छु। जसले मेरा छोराहरूको हत्या गर्ने इन्द्रलाई मार्न सक्छ त्यस्तो अत्यन्त पराक्रमी पुत्र मलाई दिनुहोस् ॥१०–११॥

---

१. तृषार्तितः, इति न.सं.पु.पाठः।
२. प्रलब्धवान्, इति न.सं.पु.पाठः।
३. इदानीं संविधास्यामि पृष्टं मयि त्वयाधुना, इति न.सं.पु.पाठः।
४. बहुपुत्रवती सुखी, इति न.सं.पु.पाठः।
५. हेतुकी, इति न.सं.पु.पाठः।

कश्यप उवाच

तथाऽस्तु ते प्रिये साध्वि ! यत्त्वं वाञ्छसि साम्प्रतम्। तपसो दुर्लभं नास्ति हृद्वाञ्छां पूरयेत्तपः[६] ॥१२॥
भविष्यति सुतो देवि तव साध्व्याः पतिव्रते। शक्रं पुत्रोऽतिहन्ता वै यद्येवं व्रतमाचरेः ॥१३॥
शौचाद्धारयसे देवि गर्भञ्च शरदः शतम्। प्रसोष्यसि[७] ततः पुत्रं त्रैलोक्योन्मथने क्षमम् ॥१४॥

स्कन्द उवाच

उपगम्य ततो दित्यां गर्भमाधाय कश्यपः। रोचमानः सुराणां च मुनीनां प्रीतिहेतुकम्[७क] ॥१५॥
जगाम पर्वतश्रेष्ठं हिमवन्तं महाचलम्। तपसे च मुनिश्रेष्ठः सर्वभूतपितामहः ॥१६॥
ततो दितिर्महासाध्वी धारयामास रैतसम्। गर्भं तेजः सुदुर्द्धर्षमवध्यं प्राणिभिः सुरैः ॥१७॥
सा शुचिः सर्वकालेषु सर्वधर्म्मरता शुभा। व्रतेषु तत्परा स्त्रीणां सत्यसन्धा जितेन्द्रिया ॥१८॥
तस्मिन्काले घटोद्भूत जगाम नारदो दिवम्। आदाय सर्ववार्त्ताञ्च तस्या यच्चरितं मुनिः ॥१९॥
गायन् रुद्रयशो धीमान् संवाद्य वल्लकीं मुहुः। गीतवाद्यरतो धीरः सर्वलोकाभिसूचकः ॥२०॥
ततोऽदर्शत्सुनासीरः समायान्तं च नारदम्। वल्लकीं वादयन्तं वै रुद्रयशःप्रगायकम् ॥२१॥
उदतिष्ठत्तदा शक्रः सिंहासनात्पुरोगतः। तमासने समानीय विधिवदुपवेशयत् ॥२२॥
अपूपुजत्ततः साधुमर्हणैः सुसमाहितैः। सम्पूज्य विधिवच्छक्रः प्रश्नञ्चक्रे महामुनिम् ॥२३॥

शक्र उवाच

स्वागतं ते मुनिश्रेष्ठ कुशलं ते कलेवरम्। लोकेषु सर्वभूतेषु कुशलं विद्यते क्वचित् ॥२४॥
ब्रह्मपुत्र द्विजश्रेष्ठ पवित्रायतनो भवान्। समागतोऽत्र देवर्षिर्मम पार्श्वे सुभाग्यतः[८] ॥२५॥
कल्पत इति भद्राय महात्मनां समागमः। भद्रायागमनं कस्मै वद मे मुनिसत्तम ॥२६॥

---

कश्यपले भन्नुभयो – हे प्रिया ! हे पतिव्रता ! तिमी अहिले जे चाहन्छ्यौ, त्यो हुन्छ। तपस्याद्वाराअलभ्य वस्तु केही छैन। मनको इच्छा पनि तपस्याबाटै पूर्ण हुन्छ। असल शीलस्वभाव भएकी हे पतिव्रता ! मैले भने अनुसारको व्रत गर्‍यौ भने तिमीलाई इन्द्रको नाश गर्ने पुत्र प्राप्त हुनेछ। तिमीले पवित्र भएर सय वर्षसम्म गर्भधारण गर्न सक्यौ भने तिमीलाई तीनै लोकको विजय गर्ने पुत्र प्राप्त हुनेछ ॥१२–१४॥

कार्तिक स्वामीले भन्नुभयो – त्यसपछि दैत्यलाई सुख र देवतालाई शोक पैदा गर्ने किसिमको गर्भाधान दितिमा गराएर सारा प्राणीका पितामह मुनिवर कश्यप पर्वतराज हिमालयमा तपस्या गर्न जानुभयो ॥१५–१६॥

पतिव्रता दितिले कुनै प्राणी अथवा देवताहरूले पनि नाश गर्न नसक्ने, सामान्य नारीले गर्न नसक्ने कश्यपको वीर्यलाई गर्भको रूपमा धारण गरिन्। दिति सधैँ पवित्र भएर रहन थालिन्। सबै समय धर्ममा उन्मुख भइन्। उनी स्त्रीजातिको व्रतमा तत्पर, सत्यसाधिका र जितेन्द्रिय भएर बसिन् ॥१७–१८॥

हे अगस्त्य मुनि ! त्यसैबेला दितिको सारा चरित्रको समाचार लिएर नारद गीत गाउँदै बुद्धिमान् भए पनि छुल्याईं गर्दै, भगवान् रुद्रको कीर्ति गाउँदै अनि बारम्बार सितार बजाउँदै स्वर्गमा गए। त्यसपछि इन्द्रले वीणा बजाउँदै, महादेवको चरित्रगान गर्दै आउन लागेका नारदलाई देखे। अनि उनले सिंहासनबाट उठेर अगाडि पुगी नारदलाई ल्याएर विधिपूर्वक आसनमा बसाले। पूजासामग्रीहरूले ती साधु नारदलाई बडो सावधानीका साथ विधिपूर्वक पूजा गरेर इन्द्रले प्रश्न गरे ॥१९– २३॥

इन्द्रले भने – मुनिवर ! तपाईंलाई स्वागत छ। के हजुरको शरीरमा कुशल छ ? लोकका सबै प्राणीहरू के आरामै छन् ?। हे ब्रह्मपुत्र ! हे द्विजवर ! हजुर पवित्रताको मुहान हुनुहुन्छ। मजस्तो अनुजीवीको घरमा हजुर पाल्नुभएको छ। महात्माहरूसँगको भेटघाटले कल्याण हुन्छ भन्ने मैले कल्पना गरेको छु। हे मुनिवर ! अहिले हजुर कुन कल्याणकारी कार्यले यहाँ आउनुभयो ? मलाई सबै बताउनुहोस् ॥२४–२६॥

---

६. हृद्वाञ्छा तपसोद्भवा, इति न.सं.पु.पाठः।
७. प्रसूयसि, इति न.सं.पु.पाठः।
७क. रोचयन्वै सुरश्रेष्ठं देवानां गणहेतुकम्, इति न.सं.पु.पाठः।
८. समागतोऽत्र देवर्षिमोपजीविनो यतः, इति न.सं.पु.पाठः।

नारद उवाच

शृणु शक्र ध्रुवं तत्त्वं ममाऽऽगमनकारणम्। विमातुश्चरितं दित्यास्तवाद्भुततरं[९] तपः ॥२७॥
नानाधर्म्मोपवासैश्च बहुनियमसंयुतैः। सन्तोषितः पिता ते वै याचितोऽसौ वरस्तया ॥२८॥
यो हनिष्यति शक्रं वै बहुबलपराक्रमः। हन्तारं मम पुत्राणां तं पुत्रं देहि मे प्रभो ॥२९॥
कश्यपोऽपि ददौ तस्यै वरं वरमहाद्भुतम्। दितिर्दधार गर्भं सा नियमस्था तदुत्सुका ॥३०॥
उपायं कुरु देवेन्द्र यदि चेदात्मनः शुभम्। यावच्च नाऽऽगतो विघ्नस्तावच्च यत्नवान् सुधीः ॥३१॥

स्कन्द उवाच

एवं संवर्ण्य शक्राय ह्यन्तर्द्धानं ययौ मुनिः। देवेन्द्रोऽपि तदाकर्ण्य वचनं मुनिभाषितम् ॥३२॥
क्षेमाय ह्यात्मनो धीर शत्रूणां निधनाय च ॥३३॥
आदाय वै महद्वज्रं ययौ यत्र दितिः स्थिता। शक्रो धर्मच्युतिं तस्याञ्छिद्रान्वेषणतत्परः ॥३४॥
बभूवाऽहर्निशं तत्र छन्नात्मा सञ्चरन्मुने। उपागम्य शनैस्तां वै छन्नात्मा दर्शयन् रहः ॥३५॥
कदा धर्मच्युतिः स्याच्च ह्येतस्या इति तत्परः। नित्यमेवञ्चरँश्छक्रः सोऽमर्षपूरितः सदा ॥३६॥
एकसंवत्सरे न्यूने शताब्देऽपश्यदन्तरम्। अकृत्वा पादयोः शौचं नोपस्पृश्य जलं तथा[१०] ॥३७॥
भ्रान्तचित्ता च शय्यायां ततः शेते दितिस्तदा। निद्रावशं गता साध्वी गुर्विणी सा प्रियंवदा ॥३८॥
ततो ददर्श वज्री तामशुचिचरणाद्वयाम्। तस्याः कुक्षिं समाविश्य गर्भं शक्रो महाबलः ॥३९॥
चिच्छेद कुलिशेनाऽऽशु सप्तधा कृतवाँस्ततः। विदारितः स वज्रेण गर्भो रुरोद निर्भरम् ॥४०॥
ततोऽवदद्वृषा गर्भं मा रुदतु[११] भवान् वृथा। तदंशञ्च वृषा भूयः सप्तधा सप्तधाऽच्छिनत् ॥४१॥

---

नारदले भने – हे इन्द्र ! म आउनुको वास्तविक प्रयोजन के हो भने तपाईंकी सानीआमा दिति अद्भुत तपस्या गर्दै हुनुहुन्छ, उहाँको चरित्र सुन्नुहोस्। नियमबद्ध भई विभिन्न किसिमका धर्मसम्बन्धी कृत्य तथा उपवास गरेर दितिले तपाईंका पिताजीलाई प्रसन्न बनाएर वर माग्नुभयो – हे प्रभो ! मेरा छोरा मार्ने इन्द्रलाई मार्न सक्ने ठूलो बल र पराक्रम भएको पुत्र मलाई दिनुहोस् ॥२७–२९॥

कश्यपले पनि उनलाई अद्भुत किसिमको वर दिनुभयो र दितिले गर्भधारण गर्नुभयो। अहिले नियममा स्थित उहाँ त्यो छोरा कहिले जन्मिएला भन्ने प्रतीक्षामा हुनुहुन्छ। हे देवराज ! हजुर यदि आफ्नो कल्याण चाहनुहुन्छ भने उपाय गर्नुहोस्। आपत्ति आउनुभन्दा पहिले नै प्रतीकारको उपाय गर्ने मानिस बुद्धिमान् कहलाउँछ ॥३०–३१॥

कार्तिक स्वामीले भन्नुभयो – यसरी इन्द्रलाई बताएर नारद अन्तर्धान भए। नारदले भनेको कुरा सुनेर आत्मकल्याण गर्ने र शत्रुको नाश गर्न ठूलो वज्र लिएर इन्द्र जहाँ दिति बसेकी थिइन् त्यसै ठाउँमा गए। हे अगस्त्य मुनि ! दिति आफ्नो नियमबाट कहिले च्युत होलिन् भनेर तिनको छिद्रान्वेषण गर्दै ठूलो वज्र हातमा लिएर इन्द्र त्यहाँ सधैंभरि लुकेर घुम्न थाले र नदेखिने भएर बिस्तारै–बिस्तारै नजिकमा गएर मौका खोज्न थाले, यिनले कहिले नियम छोड्लिन् र अवसर पाउँला भन्दै सधैं रीसले चूर भएर इन्द्र हिँड्न थाले ॥३२–३६॥

सय वर्ष पुग्न एक वर्ष बाँकी रहेको समयमा उनले दि तिको त्रुटि फेला पारे। एकदिन दिति गोडा नधोई, कुल्ला नगरी ओछ्यानमा गएर सुतिन्। गर्भवती पतिव्रता उनी मस्तसँग निदाइन् पनि। महाबली इन्द्रले त्यसपछि गोडा नधोई सुतेकी दितिलाई देखेर तिनको पेटमा पसे र तिनको गर्भको बच्चालाई वज्रले सात टुक्रा पारेर काटे। त्यसरी काटिएको गर्भ बेस्सरी रोयो। इन्द्रले त्यसलाई विनाकाम किन रुन्छस्, न रो भने र फेरि ती सात टुक्रालाई एक–एक गरी सात–सात टुक्रा पारेर काटे ॥३७–४१॥

---

९. भुतकृतम्, इति न.सं.पु.पाठः।
१०. सलिलं नोपसंस्पृशन्, इति न.सं.पु.पाठः।
११. मा रोदीच्च, इति न.सं.पु.पाठः।

ततोऽब्रवीच्च तं शक्रः सखा भवेद् भवान् हि मे। तदा त्वं मुच्यसे[१२] नो चेज्जीवितात् त्वं विमुच्यसे[१३] ॥४२॥
गर्भः प्राह च तस्मै[१४] वै यथा वदसि तत्तथा। ततः शक्रो विनिर्गत्य सन्तुष्टवान् मनोरथैः ॥४३॥
विज्वरोऽसौ ययौ धीरो ललितामरावतीम्। ततो गर्भात्समुद्भूतो वायुर्नाम महाबली ॥४४॥
सर्वेषामोजसः सारः सर्वलोकप्रकम्पनः। ऊनपञ्चाशदात्माऽसौ सर्वतेजोमयस्तथा ॥४५॥
सर्वभूतगुहाशायी सर्वोन्नतपराक्रमः ॥४६॥

ततः प्रसन्नाः ककुभो बभूवु[१५] स्तदीयसम्भूतिदिने निकामम्।
सुराश्च मन्दा हृदयेन चाऽऽसँस्तदा ययौ तत्र मुनिः सहर्षम् ॥४६॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे वायोरुत्पत्तिर्नाम सप्तदशोऽध्यायः ॥१७॥

---

यसरी टुक्रा–टुक्रा बनाएपछि त्यस गर्भलाई इन्द्रले भने – यदि तिमी मेरो मित्र बन्छौ भने म छोडिदिन्छु होइन भने तिमीलाई जिउँदै छोड्नेछैन। त्यो गर्भको बच्चाले इन्द्रसँग तपाईं जे भन्नुहुन्छ म त्यसै गर्दछु भन्यो। त्यसपछि इन्द्र त्यहाँबाट निस्केर आफ्नो मनोरथ पूर्ण भयो भनी सन्तुष्ट हुँदै सारा चिन्ता र पिर त्यागेर आफ्नो सुन्दर राजधानी अमरावतीतिर गए। त्यसपछि दितिको गर्भबाट अत्यन्त शक्तिशाली, सम्पूर्णका तेजको सार भएका, सारा लोकलाई थर्काउने, तेजैतेजको शरीर भएका, सारा प्राणीहरूको हृदयरूपी गुफामा बस्ने, सबैभन्दा ठूलो पराक्रम भएका र उनन्चासवटा रूप भएका वायु उत्पन्न भए ॥४२–४५॥

त्यसरी उनन्चास वायु उत्पन्न भएको दिन सम्पूर्ण दिशाहरू स्वच्छ भए, देवताहरू पनि भित्रैदेखि प्रसन्न भए र नारदमुनि पनि खुसी हुँदै त्यहाँ जानुभयो ॥४६॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गत हिमवत्खण्डको सुधातीर्थमाहात्म्यमा वायुको उत्पत्तिको सन्दर्भनामक सत्रौं अध्याय पूर्ण भयो।

---

१२. यदि त्वं मुच्यते, इति न.सं.पु.पाठः।
१३. चेज्जीवितं त्वन्न मुच्यसे, इति न.सं.पु.पाठः।
१४. यस्मै, इति न.सं.पु.पाठः।
१५. भवेयु, इति न.सं.पु.पाठः।

# अष्टादशोऽध्यायः

## ब्रह्मतीर्थमहिमा वायोर्दिक्पालकत्वेनाभिषेकश्च

### स्कन्द उवाच

सभामध्ये स्थिते वायौ कस्मिँश्चिद्दिवसे मुने। यदृच्छयागतं तत्र नारदं मुनिसत्तमम् ॥१॥
ददर्श स महाभागो वीणाहस्तं कलापिनम्। गायन्तं सुस्वरं गीतं वादयन्तं मुहुर्मुहुः ॥२॥
ततो वायुर्महातेजा उदतिष्ठत् सभातलात्। प्रत्युद्ययौ मुनिं मान्यं परिवारैश्च मन्त्रिभिः ॥३॥
सम्पूज्य विधिवत्पूज्यमर्घ्यमर्घ्यार्हणैर्मुदा। ननाम चाऽसने धीमान् समुपावेशयन्मुनिम् ॥४॥
ततः प्रचेतसो वार्त्तां तेन पृष्टश्च नारदः। सर्वां तां वर्णयामास वायवे मुनिसत्तमः ॥५॥

### वायुरुवाच

हिरण्यगर्भसम्भूत सर्ववार्त्ताविशारद। कस्मिन्स्थाने महाक्षेत्रे तपःसिद्धिर्भवेद् ध्रुवम् ॥६॥
ममाऽपि वर्त्तते वाञ्छा तपस्तप्तुं सुनिश्चितम्। अद्य ब्रह्मन्ननाथाय मह्यं हि चोपदिश्यताम् ॥७॥

### नारद उवाच

अहो धन्यतमो वायो तव[1] चेतो महाद्भुतम्। ईदृशी बुद्धिरार्यस्य दुर्लभः किं विधीयते ॥८॥
हिमवति नगश्रेष्ठे पश्चिमोत्तरमध्यतः। स्फाटिकाद्रिर्म्महातुङ्गो यस्माद् ब्रह्मनदीजनुः ॥९॥
ब्रह्मवती नदी पुण्या रुद्रभद्रनदस्तथा। तयोश्च सङ्गमे तीर्थे सर्वतीर्थोत्तमोत्तमे ॥१०॥
तत्र स्नात्वा दिवं याति सर्वपापैर्विवर्जितः। ब्रह्महत्यादिपापेभ्यः स मुक्तो नात्र संशयः ॥११॥
यं यमिच्छति तं तं[2] वै कामं प्राप्नोति निश्चितम्। ब्रह्मतीर्थे महावीर स्नानं तत्र करोति यः ॥१२॥

---

## अध्याय- १८

### ब्रह्मतीर्थको महिमा र वायुको दिक्पालका रूपमा प्रतिष्ठा

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! कुनै दिन वायु सभामा बसिरहेका थिए। त्यसै अवस्थामा ती महाभाग्यमानीले वीणा हातमा लिएर मीठो स्वरले गीत गाउँदै र बारम्बार बाजा बजाउँदै जटाधारी मुनिश्रेष्ठ नारद आउन लागेको देखे। नारदजीलाई देखेपछि वायु सभाबाट जुरुक्क उठेर परिवार र मन्त्रीहरूका साथ उनको स्वागत गर्न गए। बुद्धिमान् वायुले प्रसन्नताका साथ पूज्य नारदजीलाई पूजासामग्री तथा अर्घ्यले विधिवत् पूजा गरी प्रणाम गरे र आसनमा बसाले। वायुले कुशलप्रश्न सोधपूछ गरेपछि मुनिवर नारदले उनलाई वरुणले तपस्या गरेको सबै वृत्तान्त बताए ॥१–५॥

वायुले भने – हे सर्वज्ञ ब्रह्मपुत्र ! कुन ठाउँमा, कुन क्षेत्रमा गएर तपस्या गऱ्यो भने सिद्धि प्राप्त हुन सक्छ ? हे ब्रह्मन् ! मलाई तपस्या गर्ने तीव्र इच्छा लागेको छ, म अनाथलाई उपदेश दिनुहोस् ॥६–७॥

नारदले भने – अहो वायु ! तपाईं धन्य हुनुहुन्छ, तपाईंको मन असल रहेछ। यस्तो असल बुद्धि भएपछि दुर्लभ वस्तु के हुन्छ र ?। पर्वतराज हिमालयमा पश्चिम र उत्तर दिशाको बीचमा स्फटिकमणिले बनेको अग्लो शिखर छ, जहाँबाट ब्रह्मावती नदी निस्केकी छिन्। त्यहाँ ब्रह्मावती नदी र रुद्रभद्रा नदीको सङ्गममा सम्पूर्ण तीर्थहरूमा उत्तम तीर्थ छ। त्यहाँ स्नान गरियो भने सम्पूर्ण पापबाट मुक्त भएर प्राणी स्वर्ग जान्छ। स्नान गर्ने प्राणी ब्रह्महत्याजस्ता पापबाट पनि मुक्त हुन्छ, यसमा सन्देह छैन। हे महावीर ! त्यस ब्रह्मतीर्थमा जसले स्नान गर्दछ, त्यसले जे–जे चाहन्छ, अवश्य नै त्यही–त्यही फल प्राप्त गर्दछ ॥८–१२॥

---

१. वत, इति न.सं.पु.पाठः।
२. यद्यदिच्छति तं तम्, इति न.सं.पु.पाठः।

ब्रह्मणा च कृतं पूर्वं स्नानं भूतोद्भवाय च। सम्पूज्य शङ्करं तत्र ततः सृष्टिञ्चकार सः ॥१३॥
तस्मिन्स्तीर्थे महापुण्ये स्नानं पुनः करोति यः। प्रविहायोद्भवं सद्यो ब्रह्मत्त्वं याति भक्तिभिः ॥१४॥
तत्र स्नात्वा महातीर्थे स्फाटिकाद्रौ तपः कुरु। प्रलेपय तनुं भूत्या[३] देहेऽक्षान्धारयाऽनिल ॥१५॥
संस्थाप्य विधिवल्लिङ्गं सर्वदं तं महेश्वरम्। जितेन्द्रियो जितक्रोधः प्रजप्यतां यदृच्छया ॥१६॥

स्कन्द उवाच

एवमुक्त्वा ततस्तस्मै चान्तर्द्धानं ययौ मुनिः। नारदो देववन्द्योऽसौ सर्ववार्त्ताप्रसूचकः ॥१७॥
ततो वायुर्ययौ विप्र हिमालयं नगोत्तमम्। ब्रह्मतीर्थं महापुण्यं भूयः पापप्रणाशकम् ॥१८॥
प्रापश्यद्धर्षितो वायुर्यदुक्तं नारदेन तत्। तत्र सस्नौ सुखं वीरः निमज्य[३क] सलिले मुदा ॥१९॥
ततः सस्नौ पुनर्भूत्या सर्वाङ्गेषु च मन्त्रवित्। रुद्राक्षांश्च दधाराऽङ्गे ददौ दानानि भूरिशः ॥२०॥
ततः स्फटिकशैलेन्द्रं शुद्धं सुनिर्मलं मुने। समारोहदमेयात्मा रजताभं महाचलम् ॥२१॥
संस्थाप्य विधिल्लिङ्गं तत्र पित्तलसम्भवम्। अपूपुजत्तदा देवं सर्वासुरनमस्कृतम् ॥२२॥
गन्धैः पुष्पैस्तथा दीपैस्तीर्थोदकैश्च मन्त्रवित्। ऋजुकायः समासीनः[४] सर्वद्वन्द्वविवर्ज्जितः ॥२३॥
ततो जजाप सर्वात्मा एकचित्तो महाबलः। दिव्यवर्षशतं साग्रं षड्वर्गैः संविवर्जितः ॥२४॥
ततश्च भगवान् रुद्र आविर्भूतस्तदान्तिके। रुद्रं ददर्श तं वायुः स्तुतिं चक्रे महात्मनः[५] ॥२५॥

---

अघि ब्रह्माजीले प्राणीहरूको सृष्टि गर्न पहिले त्यहाँ स्नान गरेर भगवान् शङ्करको आराधना गर्नुभयो। त्यसपछि उहाँले सृष्टि गर्नुभएको थियो। अत्यन्त पुण्यदायक त्यस तीर्थमा जसले भक्तिपूर्वक स्नान गर्दछ, त्यो व्यक्ति तत्कालै मानवयोनिलाई छोडेर ब्रह्मस्वरूपमा प्राप्त हुन्छ। हे वायु ! तिमी पनि त्यही महातीर्थमा स्नान गरेर स्फटिकाचलमा बसी शरीरमा खरानी घस र रुद्राक्ष धारण गरेर तपस्या गर। त्यसपछि तिमीले विधिपूर्वक शिवलिङ्गको स्थापना गरेर सर्वस्व प्रदान गर्नुहुने महादेवको आराधना गर। जितेन्द्रिय भएर क्रोधलाई वशमा राखी इच्छानुसार जप गर ॥१३-१६॥

कार्तिक स्वामीले भन्नुभयो - वायुलाई यति कुरा भनेर सबैको कुरा लगाउने देववन्द्य मुनिवर नारद अन्तर्धान भए। हे अगस्त्य मुनि ! त्यसपछि वायु उत्तम पर्वत हिमालयमा अवस्थित अनेक पापनाश गर्ने अत्यन्त पुण्यप्रद त्यस ब्रह्मतीर्थमा पुगे। त्यस स्थानमा नारदले आफूलाई जस्तो भनेका थिए, त्यस्तै देखेर वायु अत्यन्त प्रसन्न भए। त्यसपछि मन्त्रज्ञ ती वायुले शरीरभरि ब्रह्मतीर्थको जलमा डुबेर सानन्द स्नान गरे। त्यसपछि सर्वाङ्गमा भस्मोद्धूलन गरी भस्मस्नान गरेर रुद्राक्षमाला धारणगरी धेरै ब्राह्मणहरूलाई दान दिए ॥१७-२०॥

हे मुनिवर ! अपरिमित स्वरूपका ती वायु चाँदीजस्तो वर्ण भएको, शुद्ध र सफा अत्यन्त ठूलो स्फटिकाचलमा उक्लिए। त्यहाँ उनले विधिवत् पित्तलको शिवलिङ्ग स्थापना गरेर सबै दैत्य र दानवहरूद्वारा आराधना गरिनुहुने महादेवको पूजा गरे। चन्दन, फूल, बत्ती र तीर्थका जलहरूले पूजा गरे। सोझो शरीर गराई आसन बाँधेर, जाडो-गर्मी, भोक-प्यास आदि सबै द्वन्द्वको सहन गरेर काम, क्रोध आदि षड्वर्गलाई वशमा राखेर, महादेवमा तन मन लगाई एकचित्त भएका अत्यन्त पराक्रमी ती वायुले दिव्य एक सय वर्षभन्दा बढी समयसम्म महादेवको मन्त्र जप गरे। त्यसपछि भगवान् शङ्करले नजिकै आएर उनलाई आफ्नो स्वरूपको दर्शन दिनुभयो। वायुले महात्मा महादेवको स्तुति गरे ॥२१-२५॥

---

३. भूत्वा प्रलेपितो देहो, इति न.सं.पु.पाठः।
३क. प्रोन्मज्य, इति न.सं.पु.पाठः।
४. समासीतः, इति न.सं.पु.पाठः।
५. तं प्रदर्शितवान् वायुः स्तोत्रञ्चक्रे महात्मने, इति न.सं.पु.पाठः।

वायुरुवाच

नमो भवाय भव्याय विरूपाय सुरूपिणे। कालातीताय कालाय कर्म्मरूप नमोऽस्तु ते ॥२६॥
तेजसां पुञ्जरूपाय[६] सर्वतेजोमयात्मने। ज्योतिषां ज्योतिरंशाय ज्योतीरूप नमोऽस्तु ते ॥२७॥
सर्वप्रणतदेवाय स्वयमप्रणताय वै। सर्वदाय च शर्वाय सर्वेश्वर नमोऽस्तु ते ॥२८॥
बहुरूपाय रुद्राय मुक्तसंशय ते नमः। बुद्धात्मने महेशाय शुद्धदेह नमोऽस्तु ते ॥२९॥
एकस्मै च द्विरूपाय बहुदेहाय ते नमः। एकाननाय देवाय द्विवक्त्राय नमो नमः ॥३०॥
बहुवक्त्राय भर्गाय नक्षत्रेशललाटिने। शूलिने ब्रह्मरूपाय विष्णुरूपाय ते नमः ॥३१॥
नमः स्थूलाय सूक्ष्माय स्थूलसूक्ष्मसुदेहिने। लक्ष्याय समलक्ष्याय लक्ष्यालक्ष्यस्वरूपिणे ॥३२॥
कामेश्वराय कामाय कामदाय च कामिने। कालरात्रिकलांशाय कामकान्त नमोऽस्तु ते ॥३३॥
ईशानाय महेशाय तत्पुरुषाय शाश्वत। हराय वामदेवाय व्योमकेशाय वै नमः ॥३४॥
सद्योजाताय रौद्राय महादेवाय वै नमः। अघोराय च घोराय घोरदेह नमोऽस्तु ते ॥३५॥

स्कन्द उवाच

इति स्तुतिं समाकर्ण्य देवदेव उमापतिः। सन्तुतोष ततो धीर मारुते वरयोगिनि[६क] ॥३६॥
उवाच शङ्करो देवो मारुतं सुतपस्विनम्। भक्ताय भक्तिप्रीतात्मा[७] वरं दातुं समागतः ॥३७॥

शर्व उवाच

अहो वत्स त्वया तप्तं कठोरं सुमहत्तपः। धन्योऽतः कृतकृत्योऽसि सर्वलोकैः सुदुश्चरम् ॥३८॥

---

वायुले भने – निराकार भएर पनि राम्रो रूप धारण गर्नुभएका मङ्गलमय भवलाई नमस्कार छ। हे कर्मरूप भगवान् ! कालभन्दा पर भएर पनि कालस्वरूप हजुरलाई नमस्कार छ। तेजको पुञ्जरूपी शरीर भएका, तेजै-तेजको आत्मा भएका, ज्योतिका पनि ज्योतिस्वरूप अंश भएका हे ज्योतिरूप ! हजुरलाई नमस्कार छ। सबै देवताहरूद्वारा नमस्कार गरिनुभएका, तर आफू कसैलाई नमन नगर्ने, सम्पूर्ण वस्तु प्रदान गर्ने शिवस्वरूप हे सर्वेश्वर ! हजुरलाई नमस्कार छ। हे मुक्तसंशय ! धेरै रूप ग्रहण गर्ने रुद्रस्वरूप हे महेश्वर ! हजुरलाई नमस्कार छ। हे शुद्धदेह ! प्रबुद्ध आत्मा भएका महेश्वर हजुरलाई नमस्कार छ। एकरूप भईकन पनि दुईरूप र अनेक शरीर धारण गर्नुहुने हजुरलाई नमस्कार छ। एक मुख भईकन पनि दुई मुख भएका महादेवलाई बारम्बार नमस्कार छ ॥२६-३०॥

धेरै मुख भएका, तेजोरूप लिने, निधारमा चन्द्रमा धारण गर्ने, त्रिशूलधारी, ब्रह्मा तथा विष्णुको रूप लिने हजुरलाई नमस्कार छ। स्थूल, सूक्ष्म, स्थूल शरीरधारी तथा सूक्ष्म शरीरधारी, लक्ष्य, समलक्ष्य र लक्ष्यालक्ष्य रूप लिने ईश्वरलाई नमस्कार छ। कामेश्वर, कामस्वरूप, काम वा कामना पूर्ण गर्ने कामी र कालरात्रिका कलाका अंश भएका हे कामकान्त ! हजुरलाई नमस्कार छ। ईशान, महेश्वर, तत्पुरुष, शाश्वत, हर, वामदेव र व्योमकेशलाई बारम्बार नमस्कार छ। त्यस्तै सद्योजात, रौद्र र महादेवलाई नमस्कार छ। अघोर, घोर तथा घोर शरीर लिने हजुरलाई नमस्कार छ।३१-३५॥

कार्तिक स्वामीले भन्नुभयो – हे धीर ! यस्तो स्तुति सुनेर उमापति महादेव श्रेष्ठ योगी वायुमाथि प्रसन्न हुनुभयो। भक्तलाई वर दिन आउनुभएका भक्तवत्सल महादेवले तपस्वी वायुलाई भन्नुभयो ॥३६-३७॥

महादेवले भन्नुभयो – ए बाबु ! तिमीले सबै प्राणीले गर्न नसक्ने अति कठोर तपस्या गर्‍यौ, यसैले तिमी धन्य छौ, अब तिमी कृतकृत्य भयौ ॥३८॥

---

६. देहाय, इति न.सं.पु.पाठः।
६क. सन्तुष्टवान् ततो धीर वायुना वरशोभिना, इति न.सं.पु.पाठः।
७. उवाच शङ्करो देवो वायवे सुतपस्विने। भक्ताय भक्त्यतिस्नेहो वरं दातुं समागतः ॥, इति न.सं.पु.पाठः।

अत्रागतस्तवाहूतः प्रेरितस्ते तपोहृदा। दास्येऽधुना वरं तुभ्यं सर्वदेवसुदुर्लभम् ॥३९॥
मां कामदं महाबाहो ज्ञात्वेदानीं न संशयः। सर्वदे मयि तद् वायो[८] याच्यतां ते यदीप्सितम् ॥४०॥

वायुरुवाच

अहो भाग्यं ममेदानीं यतस्तुष्टो[९] भवान् भृशम्। मयि क्षुद्रे भवेद्दासे किं विधेयमतः परम् ॥४१॥
अगोचरो महादेवः सर्वतेजोमयो विभुः। भवेदद्य च नेत्रस्य क्षुद्रस्य मम गोचरः ॥४२॥
आभाषणं[१०] विशेषेण भवेद्देवस्य साम्प्रतम्। सर्वदेवप्रवन्द्यस्य किं विधेयमतः परम् ॥४३॥
यदि ददासि मे देव लोकभूतानुकम्पक। त्वयि भक्तिरतो नित्यं त्वत्पूजने च तत्परः ॥४४॥
त्वत्पादस्मरणं नित्यं ते नामग्रहणं तथा। त्वद्वन्दने च तात्पर्यं त्वत्कथाश्रवणे तथा[११] ॥४५॥
इति भक्तिर्महादेव नान्यत्तत्त्वञ्च याच्यसे। ददस्व जगदीशान भक्तिज्ञ भक्तवत्सल ॥४६॥

शर्व उवाच

न कामश्चेत्तवेदानीं भवेद्वायोत्र निश्चयः। तथापि ते प्रदास्येऽहं वरं लोके सुदुर्लभम् ॥४७॥
तपोभी रोपिता वृक्षा दृढमूलाः फलन्ति यत्। तत्फलानि च दास्यन्ति कर्तृभ्यः शाखिनः सुखम् ॥४८॥
अदाने च समर्थास्ते भवन्ति शाखिनोऽपि किम्। तपोमूलं हि सर्वेषां तपस्या तु गरीयसी ॥४९॥
तपोभिश्च भवेत्स्वामी हर्त्ता कर्त्ता च पालकः। तस्मात्तपोऽर्ज्जितं कर्म कुरुते चान्यथा किमु ?[११क] ॥५०॥
यस्मात्त्वया प्रतप्तं हि सर्वदेवसुदुश्चरम्। अद्य प्रभृति चाऽऽर्यस्त्वं जगत्प्राणो भवाऽनिशम् ॥५१॥
त्वां विना सर्वलोकाश्च शवा एव भवन्तु ते। प्रधार्य्यन्तां त्वया[१२] लोका जगच्च सचराचरम् ॥५२॥

---

हे वायु ! यहाँ म तिमीले बोलाएर तपोमग्न तिम्रो हृदयद्वारा पुकार गरिँदा आएको छु। अब तिमीलाई देवताले पनि प्राप्त गर्न नसक्ने वर दिन्छु। हे महाबाहु ! मलाई मनमा लागेको जुनसुकै इच्छा पनि पूर्ण गर्न समर्थ ठानेर जे इच्छा लाग्छ, त्यो वर माग ॥३९-४०॥

वायुले भने – अहो अहिले मेरो कस्तो भाग्य ! किनभने हजुर मजस्तो तुच्छ सेवकमाथि पनि यसरी प्रसन्न हुनुभएको छ, यसभन्दा बढी के पो गर्नुछ र ?। सम्पूर्ण तेजले युक्त हुनुभएका भगवान् हजुर महादेव अगोचर हुनुहुन्छ। त्यस्ता ईश्वर म जस्तो तुच्छको अगाडि देखा पर्नुभएको छ। जसलाई सबै देवताहरूले नमन गर्छन्, त्यस्ता भगवान् महादेवसित अहिले कुरा गर्न पाएँ। त्यहाँभन्दा हुनुपर्ने कुरा के हुन्छ र ?। सम्पूर्ण प्राणीहरूमाथि दया गर्ने हे महादेव ! यदि ममाथि अनुग्रह गर्नुहुन्छ भने म हजुरको भक्त र पूजक बन्न पाऊँ। सधैँ हजुरको पाउ स्मरण गर्न पाऊँ, सधैँ हजुरको नाम लिन पाऊँ, सधैँ हजुरलाई नमस्कार गर्न पाऊँ र सधैँ हजुरको कथाश्रवणमा मेरो बुद्धि लागोस्। हे महादेव ! म यही भक्ति हजुरसँग माग्दछु, अरू केही माग्दिनँ। हे जगदीश्वर ! हे भक्तिज्ञ ! हे भक्तवत्सल ! मलाई त्यही भक्ति दिनुहोस् ॥४१-४६॥

महादेवले भन्नुभयो – हे वायु ! यदि तिमीलाई त्यही चाहिएको छ भने हुन्छ, म दिन्छु। त्यो र त्यसभन्दा पनि अन्य दुर्लभ वर म तिमीलाई दिन्छु। तपस्याद्वारा रोपिएका रुखहरूले बलियो जरा हालेर जुन फल फलाउँछन् ती वृक्षहरूले कर्ता (रोप्ने) हरूलाई गाह्रो नमानीकन ती फल दिन्छन्। के ती रुखहरू दिन्न भनेर भन्न सक्छन् र ? सबैको मूल तपस्या नै हो। त्यसैले तपस्या सबैभन्दा श्रेष्ठ हो। तपस्याले गर्दा प्राणी स्वामी, हर्ता, कर्ता र पालक बन्न सक्छ। त्यसकारण तपस्याले प्राप्त भएको कर्मको फललाई कसैले अन्यथा तुल्याउन सक्दैन।तिमीले सारा देवताले पनि गर्न नसक्ने ठूलो तपस्या गऱ्यौ, त्यसैले तिमी आजदेखि सदा सर्वदाका लागि सारा जगत्को प्राण भएर बस। तिमीविना सम्पूर्ण लोक निर्जीव हुनेछन्, यो लोक र चराचर जगत् सबैलाई तिमीले नै धारण गर्नुपर्छ ॥४७-५२॥

---

८. यद्वायो, इति न.सं.पु.पाठः।
९. तुष्ठो, इति न.सं.पु.पाठः।
१०. आभाषणो, इति न.सं.पु.पाठः।
११. संश्रवणे च ते कथा, इति न.सं.पु.पाठः।
११क. चाऽन्यथा किं प्रकुर्वते, इति न.सं.पु.पाठः।
१२. त्वया प्रधार्यताम्, इति न.सं.पु.पाठः।

अलक्ष्यो भव मर्त्यानां मन्मूर्त्तिस्त्वं न संशयः। सर्वगन्धवहोऽजस्रं सर्वोन्नतबलो वह ॥५३॥
संवर्त्तके जगत्सर्वं सलोकं सचराचरम्। संहरिष्याम्यहं वायो तव मूर्त्या न संशयः ॥५४॥
अतो लोका वदन्त्यार्य त्वां सर्वत्र प्रभञ्जनम्। मम ते च न भेदोऽस्ति एक एव पराक्रमः ॥५५॥
पश्चिमोत्तरदिग्भागे तिष्ठ मेरोः सदागतिः। ततः पालय सम्यक्त्वं तत्रस्थान् सचराचरान् ॥५६॥
तत्र हर्त्ता भवार्य्य त्वं रक्षकश्च[१३] विशेषतः। स्रष्टा च भव नित्यं त्वं गच्छानिल यथासुखम् ॥५७॥

स्कन्द उवाच

एवं सम्भाषमाणोऽजो वरं दत्वा च वायवे। अन्तर्द्धानं ययौ शीघ्रं बहुतेजोयुतो विभुः ॥५८॥
ततो देवाः सगन्धर्वा नारदो बृहतां पतिः। सप्तर्षयस्तथा सिद्धा हाहा हूहूस्तथापरे ॥५९॥
ब्रह्मा च विबुधश्रेष्ठ इन्द्रवह्नी तथा यमः। राक्षसो वरुणो धीर तत्राययुर्मुदान्विताः ॥६०॥
तस्ते ददृशुर्वायुं लब्धवरं महाद्भुतम्। तेजस्विनं तपःस्थं वै रुद्रभक्तं शिवात्मकम् ॥६१॥
दृष्ट्वांश्च ततो ब्रह्मा सर्वभूताश्रयो द्विज। उवाच वचनं तेभ्योऽभिषेकाय तपस्विनः ॥६२॥
आनयध्वं महात्मानो ब्रह्मतीर्थोद्भवं जलम्। अभिषेकं प्रदास्यामि यथाज्ञया शिवस्य च ॥६३॥
ततो देवाः समानीय तीर्थोदकं पवित्रकम्। ब्रह्मणे च ददुर्विप्र चादाय कलशैर्मुदा ॥६४॥
समुद्धृत्य पठन् वेदानुदङ्मुखस्थ आत्मभूः। अभिषेकं ददौ तस्मै हिरण्यकलशैर्मुदा ॥६५॥
दिवि देवगणाः सर्वे वाद्यं चक्रुर्महाद्भुतम्। जयशब्दस्तथा चासीद्ववृषुः[१४] पुष्पवृष्टयः ॥६६॥
ननृतुश्चाप्सरोवृन्दा गीतैर्मृदङ्गवाद्यकैः। गुरुः सुचन्दनैश्चार्य तमपूजत्समर्हणैः ॥६७॥
ततो देवगणा विप्र हर्षोत्फुल्लाः सुहृद्गणाः। स्थापयितं च वायव्ये तमाशुगं ययुर्मुदा[१५] ॥६८॥

---

हे वायु ! तिमी मर्त्यलोकमा बस्ने प्राणीहरूका अगाडि अदृश्य बन। तिमी मेरै मूर्ति हौ, यसमा सन्देह छैन। सधैं सबै गन्ध लिएर वहने र सबैभन्दा ठूला शक्तिशाली बन। हे वायु ! प्रलयकालमा मैले सारा प्राणीहरू र चराचर जगत् सबैलाई निश्चय नै तिम्रो मूर्तिद्वारा संहार गर्नेछु। यसैले सबै मानिसहरू तिमीलाई प्रभञ्जन भन्नेछन्। तिमी र ममा केही फरक छैन, हाम्रो एउटै किसिमको पराक्रम छ। हे सदागति ! सुमेरु पर्वतको पश्चिम र उत्तरको मध्यभाग अर्थात् वायव्य कोणमा तिमी रहनू। तिमीले त्यहाँ भएका चर अचर सबै प्राणीहरूको राम्रोसित पालन गर। हे आर्य ! हे वायु ! त्यहाँ तिमी सबैको हर्ता, कर्ता र पालक समेत भएर बस, आनन्दसित जाऊ ॥५३–५७॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य ! यसरी वायुलाई वरदान दिई अत्यन्त तेजस्वी भगवान् शङ्कर तत्काल अन्तर्धान हुनुभयो। त्यसपछि देवता, गन्धर्व, नारद, बृहस्पति, सप्तऋषि, सिद्ध, हाहा, हूहू, ब्रह्मा, देवताका राजा इन्द्र, वह्नि, यमराज, नैर्ऋत र वरुण अत्यन्त प्रसन्न हुँदै त्यस स्थानमा आए। तिनीहरूले शिवजीबाट वर प्राप्त गरेका, अत्यन्त आश्चर्यजनक तेजले युक्त, रुद्रभक्त र शिवस्वरूप वायुलाई देखे ॥५८–६१॥

हे अगस्त्य मुनि ! सारा प्राणीका आश्रय भएका ब्रह्माजीले ती तपस्वी वायुलाई देखेर अभिषेकका लागि देवताहरूसँग भन्नुभयो – हे महात्मा हो ! ब्रह्मतीर्थको जल लिएर आओ, म शिवजीको निर्देशन अनुसार यिनलाई अभिषेक प्रदान गर्दछु। हे विप्र अगस्त्य ! त्यसपछि देवताहरूले खुसी हुँदै त्यो पवित्र तीर्थको जल कलशहरूमा ल्याएर ब्रह्माजीलाई दिए। ब्रह्माजीले पनि उत्तर फर्केर वेद पाठ गर्दै सुनका कलशले वायुलाई अभिषेक दिनुभयो ॥६२–६५॥

हे आर्य ! आकाशमा सारा देवताहरूले अद्भुत बाजा बजाए, जय–जयकार गरे र फूलहरू बर्साए। अप्सराहरू गीत गाउँदै मादल बजाएर नाँचे, बृहस्पतिले सुगन्धयुक्त चन्दन तथा पूजासामग्रीले उनको पूजा गरे। हे अगस्त्य मुनि ! त्यसपछि देवताहरू तथा उनका मित्रगण अत्यन्त प्रसन्न भएर वायुलाई सुमेरुको पश्चिम रउत्तरको कुनामा अर्थात् वायव्यकोणमा स्थापना गर्नका लागि लिएर गए ॥६६–६८॥

---

१३. रक्षश्च, इति न.सं.पु.पाठः।
१४. ववर्षुः, इति न.सं.पु.पाठः।
१५. समानीय तमाशुङ्गं विदिशि स्थापितुं ययुः, , इति न.सं.पु.पाठः।

स्वकीयाया दिशो[१६] विप्र चाधिकारं तपस्विने। दत्त्वा ब्रह्मा ययौ तस्मै तिरोहितो महाप्रभुः ॥६९॥
ततः कुबेरोऽपि चकार नूनं तपो मुखाद्विश्रवसो हिमाद्रौ।
हिरण्यराज्यं प्रविसृज्य[१७] लङ्कां विधाय कामं हृदि रुद्रभक्तिम् ॥७०॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे ब्रह्मतीर्थमाहात्म्ये वायुतपःसिद्धिर्नामष्टादशोऽध्यायः ॥१८॥

---

ती तपस्वीलाई वायव्यदिशाको अधिकार दिएर महाप्रभु ब्रह्मा अन्तर्धान हुनुभयो। देवताहरू पनि आ–आफ्नो दिशातिर लागे। त्यसपछि विश्रवाको निर्देशन अनुसार कुबेरले पनि सुवर्णपुरी लङ्काको राज्य छोडेर मनमा शिवजीको भक्तिको कामना गर्दै हिमालयमा गएर तपस्या गरेका थिए ॥६९–७०॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्मा
ब्रह्मतीर्थको महिमा र वायव्य दिशाको दिक्पालका रूपमा वायुको अभिषेकनामक
अठारौं अध्याय पूर्ण भयो।

---

१६. स्वां स्वां दिशं तदा, इति न.सं.पु.पाठः।

१७. हिरण्यराज्यं प्रविसर्ज्य, इति न.सं.पु.पाठः।

# एकोनविंशोऽध्यायः

## ज्ञानतीर्थमाहात्म्यं कुबेरस्योत्तरदिक्पालकत्वेनाभिषेकश्च

अगस्त्य उवाच

कस्मिन् शृङ्गे तपश्चक्रे कुबेरो लोकविश्रुतः[1]। कोऽसौ कस्याऽऽज्ञया स्कन्द कस्य पुत्रो महाबली ॥१॥
इत्येतच्छ्रोतुमिच्छामि त्वत्तो ब्रह्मविदांवर। कर्म्म च यत्कृतं तेन तत्सर्वं वद मे प्रभो ॥२॥

स्कन्द उवाच

ब्रह्मणो मनसोद्भूतः पुलस्त्यो नाम विश्रुतः। तत्पुत्रो विश्रवाः ख्यातः कुबेरः स्यात्तदात्मजः ॥३॥
गुह्यककन्यकाजातो महाबलपराक्रमः। पतिः स एव यक्षाणामेकाक्षपिङ्गलो मुने ॥४॥
रुद्रभक्तिरतो नित्यं शिवपूजनतत्परः। रुद्राक्षी भस्मसुस्नायी रुद्रमन्त्रपरायणः ॥५॥
क्वचित्कालान्तरेऽतीते त्यक्त्वा लङ्कां समागतः। उत्तरे हिमवत्पादे यत्र गोकर्णशूलभृत् ॥६॥
भ्रात्राक्रान्ते पुरे यक्षो बलीयसा तपोयुजा। रावणेन जितो युद्धे चोदासीनः[१क] सुचिन्तनः ॥७॥
प्रणम्य शिरसा तातं बहुविद्यासु पारगम्। कृताञ्जलिपुटो भूत्वा परिक्रम्य पुनः पुनः ॥८॥
पितरं तत्र चाऽपृच्छद्विश्रवसं तपःफलम्। पूजयन्तं महारुद्रं ध्यायमानं स निश्चलम्[2] ॥९॥

कुबेर उवाच

तात सर्वज्ञ भक्तोऽसि सर्ववार्त्ताविशारदः। सर्वधर्मरतो नित्यं सर्वप्राण्यनुकम्पकः ॥१०॥
को धर्मः सर्वधर्माणां श्रेष्ठश्चाऽत्र निरूप्यताम्। यदनुष्ठानमात्रेण लभ्यते परमा गतिः ॥११॥
आक्रान्ता बलतो[3] लङ्का रावणेन बलीयसा। तस्यां स्थातुं समर्थो नोऽभवेत्तात पराक्रमः ॥१२॥
अतश्चाऽत्राऽऽगतोऽहं वै करिष्यामि कदाऽऽर्य्य किम्। अथवा शरणं देहि त्वया रुद्रः प्रसेव्यते ॥१३॥

---

अध्याय- १९

ज्ञानतीर्थको महिमा र उत्तरदिशाको दिक्पालका रूपमा कुबेरको अभिषेक

अगस्त्य मुनिले भन्नुभयो – हे कार्तिक स्वामी ! कुबेरले तपस्या गरे भन्ने कुरा हामीले सुन्यौं। उनले त्यो तपस्या कसको आज्ञा अनुसार कुन टकुरामा बसेर गरे ? महाबली कुबेर को हुन् ? र कसका छोरा हुन् ?। हे ब्रह्मज्ञ कार्तिक स्वामी ! हे प्रभो ! अनि उनले जे जे काम गरे, त्यो सबै म हजुरबाट सुन्न चाहन्छु, भन्नुहोस् ॥१-२॥

कार्तिक स्वामीले भन्नुभयो – ब्रह्माजीको मनबाट उत्पन्न भएका पुलस्त्य नामका प्रसिद्ध एक ऋषि थिए। उनका छोरा विश्रवा थिए र तिनै विश्रवाका छोरा कुबेर हुन्। महाबली र पराक्रमी ती कुबेर गुह्यककी कन्याबाट जन्मेका हुन्। हे मुने ! तिनको एउटा आँखा कैलो छ र उनी यक्षहरूका अधिपति हुन्। उनी नित्य महादेवको भक्ति तथा पूजा गर्थे। नित्य रुद्राक्ष धारण गर्ने उनी भस्मले स्नान गर्थे र महादेवको मन्त्र जप्थे ॥३-५॥

कालान्तरमा आफूभन्दा शक्तिशाली तपस्वी भाइ रावणले लङ्काको राज्यमा अधिकार जमाएपछि यक्षराज कुबेर उदास र चिन्तित भएर लङ्का छोडी गोकर्णेश्वर महादेवको निवासस्थल हिमालयको उत्तरपट्टिको फेदीमा आए। त्यहाँ धेरै विद्यामा पारङ्गत, सुस्थिर भएर ध्यानका साथ महारुद्रको पूजामा तत्पर आफ्ना बाबु विश्रवालाई देखेर हात जोडेर बारम्बार परिक्रमा गरी उनले तपस्याको बारेमा सोधे ॥६-९॥

कुबेरले भने – हे पिता ! हे सर्वज्ञ ! हजुर सबै विषयका वेत्ता हुनुहुन्छ। सबै किसिमका धर्ममा तत्पर हजुर सबै प्राणीका लागि दयालु पनि हुनुहुन्छ। सम्पूर्ण धर्महरूमा श्रेष्ठ धर्म कुन हो ? जुन गर्नाले परम पद प्राप्त हुन्छ, त्यो मलाई बताउनुहोस् ॥१०-११॥

बलशाली रावणले जबर्जस्ती लङ्कामा आक्रमण गर्‍यो। हे पिताजी ! पराक्रमी भएर पनि त्यहाँ मेरो पराक्रम विफल भयो। हे पिताजी ! त्यसैले गर्दा म यहाँ आएको छु। अब म के गरौं ? मलाई शरण दिनुहोस्, किनकि हजुरले महादेवको सेवा गर्नुभएको छ ॥१२-१३॥

---

१. कुबेरः इति नः श्रुतः, इति न.सं.पु.पाठः।
२. सुनिश्चलम्, इति न.सं.पु.पाठः।
१क. रावणेनानुजेताशु औदासीन्यः, इति न.सं.पु.पाठः।
३. बलेनाक्रान्तिता लङ्का, इति न.सं.पु.पाठः।

विश्रवा उवाच

शृणु पुत्र प्रवक्ष्यामि भ्रातुर्यच्चरितं तव । पुष्पकेन रथेनैव यदाऽत्र त्वं समागतः[४] ॥१४॥
आलोक्य रावणस्त्वाञ्च रथस्थं समहोत्सवम् । ततो दुःखातुरो भूत्वा सोऽपृच्छत्मातरं[४क] तदा ॥१५॥
नमस्तेऽस्तु सति मातः कः पुरुष इहागतः । पुष्पकेन च तेजस्वी देवकन्यासमायुतः ॥१६॥
इति वचः समाकर्ण्य पुत्रस्य निकषा स्थिता[५] । पुत्राय कथयामास पुत्रस्नेहवती च सा ॥१७॥
ज्येष्ठभ्राता तवासौ वै कुबेरो नाम विश्रुतः । पुरा रुद्रं समाराध्य गोकर्णेशमपूपुजत् ॥१८॥
ततः सन्तुष्टवान् रुद्रो ददौ तस्मै मुदात्मज । पुष्पकं नाम दिव्यं वै यानञ्च कामगं शिवम् ॥१९॥
तद्यानेन समायातः कुबेरो नात्र संशयः । यदि पुत्र तवेच्छोग्रं त्वमाराधय शङ्करम् ॥२०॥
ततो मातुर्वचः श्रुत्वा रावणोऽपि प्रहृष्टवान् । गोकर्णेशं समाराध्य चापूपुजन्मुदा पुनः ॥२१॥
ततो भूयो महात्माऽसौ सञ्चकार[६] महामखम् । छित्त्वा छित्त्वा स्वमूर्द्धानं पूर्णाहुतिं जुहोति सः ॥२२॥
आविर्भूतस्ततो रुद्रः पूर्वं गत्वा दशाननम् । उवाच वचनं तस्मै वरं गृहाण वत्स ते ॥२३॥
रावणश्च[७] वरो वव्रे वव्रे च कलहं मिथः । त्वं वृणु त्वं वृणु प्रोच्याभिमानी स[८] दशाननैः ॥२४॥
भूय उवाच भूतेशः सर्वभक्तेषु[९] वत्सलः । वरं गृहाण हे वत्स यत्त्वं वाञ्छसि साम्प्रतम् ॥२५॥

---

विश्रवाले भने – सुन बाबु, म तिम्रो भाइको चरित्र बताउँछु । जब तिमी पुष्पक विमानमा चढेर यहाँ आएका थियौ, त्यस समयमा विमानमा अवस्थित तिमीलाई देखेर रावण ज्यादै चिन्तित भयो र उसले आमासँग गएर सोध्यो– हे पतिव्रता आमा ! देवकन्याहरूलाई साथमा लिएर दिव्य विमानमा बसेर यहाँ आउने त्यो तेजिलो पुरुष को हो ? ॥१४–१६॥

रावणको यस्ता वचन सुनेर छोरालाई माया गर्ने कैकसीले उसलाई भनिन्– हे बाबु ! यो कुबेर नामले प्रसिद्ध तिम्रो जेठो दाजु हो । उहिले यसले महादेवको आराधना गरेर गोकर्णेश्वरमा पूजा गरेको थियो । हे पुत्र ! त्यसपछि महादेवले प्रसन्न भएर त्यसलाई चिताएको ठाउँमा पुग्न सक्ने दिव्य पुष्पक नाम गरेको विमान दिनुभयो । त्यसै यानमा चढेर कुबेर यहाँ आएको हो, यसमा सन्देह छैन । हे पुत्र ! यदि तिमीलाई पनि त्यस्तै इच्छा छ भने उग्ररूप महादेव शङ्करको आराधना गर ॥१७–२०॥

आमाको वचन सुनेर रावण अत्यन्त प्रसन्न भयो । त्यसपछि उसले अत्यन्त प्रसन्न हुँदै गोकर्णेश्वर महादेवको पूजा गऱ्यो । त्यस महात्मा रावणले पूजा गरेपछि ठूलो यज्ञ गऱ्यो । त्यसमा उसले आफ्नो टाउका काटी काटी त्यस यज्ञको पूर्णाहुति सम्पन्न गऱ्यो । यसरी दुर्लभ यज्ञ गरेको देखेर महादेव प्रकट हुनुभयो र पहिले त्यसलाई दशवटै टाउको दिनुभयो र भन्नुभयो – हे बाबु ! वर माग ॥२१–२३॥

भगवान् शिवले वर माग भन्दा अभिमानी रावणले आफैँ वर मागेन, उसले आफ्ना दश टाउकाहरूलाई तैँले वर माग, तैँले वर माग भनी आदेश दिएर उनीहरूकै झगडा गरायो। भक्तवत्सल शिवजीले त्यसपछि रावणलाई हे बाबु ! तिमीलाई अहिले जे इच्छा लागेको छ, त्यो वर माग भन्नुभयो ॥२४–२५॥

---

४. त्वमागतोऽत्र वै यदा, इति न.सं.पु.पाठः ।
४क. दुःखातुरोऽभूत्स चाऽपृच्छत्मातरम्, इति न.सं.पु.पाठः ।
५. पुनः, इति न.सं.पु.पाठः ।
६. प्रयज्ञे च, इति न.सं.पु.पाठः ।
७. रावणेन, इति न.सं.पु.पाठः ।
८. प्रोच्याभिमानी स दशाननैः, इति न.सं.पु.पाठः ।
९. सर्वभक्तिषु, इति न.सं.पु.पाठः ।

रावण उवाच

भवता दीयते चेद्धि मह्यं वरो ह्यनुत्तमः[१०]। भक्तवत्सल हे देव[११] सर्वदुःखविमोचक ॥२६॥
याचेऽद्याहं च ते भक्तिं पूर्वं ततः परं पुनः। अवध्यत्वं वरं भद्रं दिव्यमोजः सदास्तु[१२] मे ॥२७॥
विबुधैरसुरैश्चैव गन्धर्वैः किन्नरैस्तथा। यक्षाणाञ्च गणैर्देव विद्याधरैर्विशेषतः ॥२८॥
अवध्यत्वं सदा भूयात्[१३] सर्वोन्नतपराक्रमः। ग्रहाः सर्वे च मे दासा भवन्तु सर्वदा[१४] विभो ॥२९॥
कृपयसि यदि त्वं मामिदानीं सर्वद प्रभो। एतानेव वरानद्य देहि मे देव शङ्कर[१५] ॥३०॥
नरक्षुद्रैरवध्य[१६]त्वं न याचेऽहं महाप्रभो। कीटतुल्यबलैः किन्तु तार्क्ष्यश्च[१७] चटकैरिव ॥३१॥

शर्व उवाच

तथाऽस्तु ते महावीर यत्त्वं काङ्क्षसि सुव्रत। वरं ददामि ते भक्त देवदानवदुर्लभम्[१८] ॥३२॥
चतुरधिकमेवञ्च पञ्चाशद्युगमेधताम्। भवांश्च तावतीं संख्यां राज्यं करोतु निर्भरम् ॥३३॥

विश्रवा उवाच

इति दत्त्वा वरं तस्मै सोऽन्तर्दधे मुदा विभुः। तदादि रावणो मानी लोकान्नोऽगणयद् भृशम् ॥३४॥
गच्छ पुत्र महाबाहो तपस्तप्तुं यदृच्छया। हिमालये नगश्रेष्ठे सौम्ये च[१९] शिखरे गिरेः ॥३५॥
हिरण्याढ्ये महाकूटे हिरण्यवृक्षसंयुते। जाम्बूनदलतापूर्णे जाम्बूनदरसोद्भवे ॥३६॥
अगम्ये सर्वसत्त्वानां षड्वर्गैः सुविवर्जिते। महामनोहरे रम्ये तत्र संस्थापयेश्वरम् ॥३७॥
तदधश्च महातीर्थे विमले देवपूजिते। सर्वकामप्रदे भद्रे सुविनिर्मुक्तसंशये ॥३८॥
ब्रह्मपुत्रो नदश्रेष्ठः[२०] स्वर्णरसा नदी वरा। तयोश्च सङ्गमे पुत्र ज्ञानतीर्थमुदाहृतम् ॥३९॥

---

हे भक्तवत्सल ! सबै दुःखलाई हटाइदिने महादेव ! हजुर मलाई उत्तम वर दिन चाहनुहुन्छ भने सर्वप्रथम म आज हजुरको भक्तिको याचना गर्दछु। त्यसपछि म अवध्य र तेजस्वी बन्न सकूँ भन्ने वर याचना गर्दछु। हे महादेव ! मलाई देवता, दैत्य, गन्धर्व, किन्नर, यक्ष तथा विशेष गरी विद्याधरले मार्न नसकून्। मलाई सबैभन्दा ठूलो पराक्रम प्राप्त होस्, सम्पूर्ण ग्रहहरू नित्य मेरा सेवक बनून्। सम्पूर्ण वस्तु प्रदान गर्न सक्ने हे प्रभो ! हे शङ्कर ! यदि ममाथि दया गर्नुहुन्छ भने मलाई यिनै वर दिनुहोस्। हे महाप्रभो ! गरुडले भँगेराहरूबाट नमरूँ भनेर वर मागेझैँ कीरोतुल्य बल भएका क्षुद्र मानिसबाट नमरूँ भनेर म वर माग्दिनँ ॥२६-३१॥

शिवजीले भन्नुभयो - हे महावीर ! तिमी जे चाहन्छौ त्यो कुरा पूर्ण हुन्छ। हे भक्त ! म तिमीलाई देवता र दानवहरूले समेत प्राप्त गर्न नसक्ने चवन्न (५४) युगको आयु दिन्छु। तिमी यति युगभरि निर्धक्क भएर राज्य गर ॥३२-३३॥

अगस्त्यले भन्नुभयो - प्रसन्न हुँदै रावणलाई यस्तो वर दिएर भगवान् शिव अन्तर्धान हुनुभयो। त्यसै समयदेखि घमण्डी रावणले अरूलाई पटक्कै गनेन ॥३४॥

विश्रवाले भने - हे बाबु ! हे महाबाहु ! पर्वतराज हिमालयको उत्तरपट्टिको शिखरमा आनन्दपूर्वक तपस्या गर्न जाऊ। सुनैसुनले खचित भएको, सुनकै रुख भएको, सुनकै लहराले भरिएको, सुवर्णमय जल निस्कने, कुनै जीव पुग्न नसक्ने, रीस, राग आदि षड्वर्गबाट मुक्त भएको, अत्यन्त मनोहर त्यो महाशिखरमा गएर शिवलिङ्गको स्थापना गर। त्यसको तलतिर निर्मल, देवताहरूद्वारा सम्मानित, सम्पूर्ण कामना पूर्ण गर्ने, कल्याणदायी एउटा ठूलो तीर्थ छ, यसमा कुनै सन्देह छैन। त्यो तीर्थ ब्रह्मपुत्र र स्वर्णरसा नदीको सङ्गम(दोभान) मा पर्दछ। बाबु ! यसलाई ज्ञानतीर्थ भन्दछन् ॥३५-३९॥

---

१०. वरमनुत्तमम्, इति न.सं.पु.पाठः। ११. महादेव, इति न.सं.पु.पाठः। १२. दिव्यौजसं सदा च मे, इति न.सं.पु.पाठः। १३. शम्भो, इति न.सं.पु.पाठः। १४. सदा, इति न.सं.पु.पाठः। १५. एतान्येव वराण्येव ददस्व मे हि शङ्कर, इति न.सं.पु.पाठः। १६. नरक्षुद्रैश्चवध्यत्वम्, इति न.सं.पु.पाठः। १७. तार्क्ष्येण, इति न.सं.पु.पाठः। १८. दुर्लभम्, इति न.सं.पु.पाठः। १९. उत्तरे, इति न.सं.पु.पाठः। २०. ब्रह्मपुत्रनदश्रेष्ठः, इति न.सं.पु.पाठः।

तस्मिँस्तीर्थे महापुण्ये संस्कृते ब्रह्मणा पुरा। अपां[२१] स्पर्शनमात्रेण जातिसंस्मरणं लभेत् ॥४०॥
पूर्वजन्मकृतं यत्तज्ज्ञायते तत्क्षणाज्जनैः। तत्रादौ सम्यगाप्लाव्य जप मन्त्रं [२१क] यदृच्छया ॥४१॥
विभूत्या लेपयन्[२२] गात्रं रुद्राक्षान्धेहि मन्त्रकैः। सम्पूज्य विधिवल्लिङ्गं निश्चलः सुजितेन्द्रियः ॥४२॥

स्कन्द उवाच

आकर्ण्य च पितुर्वाक्यं कुबेरस्त्वरितं ययौ। ज्ञानतीर्थे तपः कर्तुं हिमवद्ब्रह्मशेखरे ॥४३॥
तत्र स्नात्वा यथोक्तं वै पित्रा च विधिपूर्वकम्। दत्त्वा दायांस्ततः शैले लिङ्गं स्थापितवान्मुने ॥४४॥
दिव्यं वर्षशतं साग्रं जजाप स यथासुखम्। कुबेरो हि ततोऽगस्त्य स्तोत्रञ्चकार निश्चलः ॥४५॥

कुबेर उवाच

येन दत्तं पुरा भद्रं शक्राय सुरदुर्लभम्। दिक्पालत्वञ्च राजत्वं देवानाञ्च नमो नमः ॥४६॥
येन दत्तं पुनः क्षेमं वह्नये तीक्ष्णतेजसे। विदिक्पाल्यं समीशत्वं तस्मै देवाय वै नमः ॥४७॥
येन दत्तं महद् भव्यं कालाय बलमुत्तमम्। पितॄणां च पतित्वं वै तस्मै देवाय वै नमः ॥४८॥
येन दत्तो वरो भूयो नैर्ऋताय पराक्रमः[२३]। देवासुरमहोत्कृष्टः तस्मै देवाय वै[२४] नमः ॥४९॥
येन भूयः प्रदत्तं वै वरुणाय सुरार्हणम्। परमपांपतित्वञ्च तस्मै देवाय वै नमः ॥५०॥
येन शिवं प्रदत्तं वै जीवैश्वर्यञ्च वायवे। दिगीशत्त्वं महाबाहो तस्मै देवाय वै नमः ॥५१॥
नमो रुद्राय भर्गाय नमः शिवाय शूलिने। नमः पशुपदेवाय शङ्कराय नमो नमः ॥५२॥
नमो ज्योतिःस्वरूपाय नमोऽलक्ष्याय देहिने। नमोऽजाय गिरीशाय हराय च नमो नमः ॥५३॥

---

पहिले कुनै समयमा ब्रह्माजीले त्यस पुण्यदायी तीर्थको संस्कार गर्नुभएको थियो। त्यस तीर्थको जल स्पर्श मात्र गरे पनि जातिशुद्ध हुन्छ। मानिसले पूर्वजन्ममा आफूले गरेका सबै कृत्यहरूत्यहाँ तत्काल थाहा पाउँछ। हे कुबेर ! त्यही तीर्थमा पहिले राम्रोसँग स्नान गरी शरीरभरि विभूति घसेर रुद्राक्ष लगाई मन्त्रको जप गर। अनि जितेन्द्रिय र स्थिर भएर विधिपूर्वक शिवलिङ्गको पूजा गर ॥४०-४२॥

कार्तिक स्वामीले भन्नुभयो – बाबुको कुरा सुनेर कुबेर तत्काल हिमालयको ब्रह्म शिखरमा रहेको ज्ञानतीर्थमा तपस्या गर्न गए। हे अगस्त्य मुनि ! त्यसपछि उनले त्यहाँ बाबुको निर्देशन अनुसार दान गरेर विधिपूर्वक त्यस पहाडमा शिवलिङ्गको स्थापना गरे। दिव्य एक सय वर्षभन्दा बढी समयसम्म आनन्दपूर्वक जप गरेर उनले निश्चिन्त भएर स्तुति गरे ॥४३-४५॥

कुबेरले भने – जसले पहिले देवताले पनि पाउन नसक्ने कल्याणदायी दिक्पाल पद र स्वर्गको राज्य इन्द्रलाई दिनुभयो, देवताको कल्याण गर्नुभयो, त्यस्ता भगवान्लाई बारम्बार नमस्कार छ। जसले तीक्ष्ण तेज भएका अग्निको कल्याण गर्नुभयो, दिक्पाल र त्यस दिशाको ईश्वर बनाउनुभयो, त्यस्ता देवतालाई नमस्कार छ। जसले यमराजलाई ठूलो कल्याण गर्नुभयो, उत्कृष्ट बल दिनुभयो र पितृहरूको अधिपति बनाउनुभयो, त्यस्ता देवतालाई नमस्कार छ। जसले नैर्ऋतलाई देवता र दैत्यहरूको भन्दा पनि साह्रै ठूलो पराक्रमशाली बन्न सक्ने वर दिनुभयो, ती देवतालाई नमस्कार छ। जसले वरुणलाई देवताहरूले पनि पूजा गर्नुपर्ने जलपतिको स्थान दिनुभयो, ती देवतालाई नमस्कार छ। जसले वायुको कल्याण गरी उनलाई सारा ऐश्वर्य प्रदान गर्नुभयो र वायव्य दिशाको अधिपति बनाउनुभयो, ती देवतालाई नमस्कार छ। भगवान् श्रीरुद्रलाई नमस्कार छ, भर्गलाई नमस्कार छ, त्रिशूलधारी शिवलाई नमस्कार छ, पशु(जीव)हरूको पालना गर्ने पशुपति देवतालाई नमस्कार छ, कल्याण गर्ने भगवान्लाई बारम्बार नमस्कार छ। ज्योतिस्वरूपलाई नमस्कार छ, लक्ष्यदेह (अनुमान गर्नुपर्ने शरीर) भएका ईश्वरलाई नमस्कार छ, पर्वतमा शयन गर्ने अजन्मा परमेश्वरलाई बारम्बार नमस्कार छ ॥४६-५३॥

---

२१. आपः, इति न.सं.पु.पाठः।
२१क. जप्यतां ते, इति न.सं.पु.पाठः।
२२. लेपयेद्, इति न.सं.पु.पाठः।
२३. पराक्रमम्, इति न.सं.पु.पाठः।
२४. देवासुमहोत्कृष्टम्, इति न.सं.पु.पाठः।

नमो निरञ्जनेशाय निर्लेपाय च तेजसे। लोकप्रणतदेहाय शाश्वताय[२५] नमो नमः ॥५४॥
ध्वान्ते भवार्णवे मग्नः प्रोद्धृतो येन लीलया। जन्ममृत्यू हृतौ येन तस्मै देवाय वै नमः ॥५५॥

स्कन्द उवाच

ततः प्रहर्षितो विप्र गुह्यकस्य स्तवैर्भृशम्। समागत्य महादेव आविर्भूतस्तदान्तिके ॥५६॥
दृष्ट्वा तपस्विनं दान्तं निर्म्ममं भक्तिसंयुतम्। उवाच वचनं हर्षाद् वरं दातुं स्वसेवकम्[२६] ॥५७॥

ईश्वर उवाच

अहो धन्यतमो भक्तो मयि भावो निरन्तरम्। त्रिविधतपःसंयुक्तो विद्यते गुह्यकेश्वरः ॥५८॥
वरं गृहाण मे भक्त यत्ते वाञ्छा सुदुर्ल्लभा। सर्वेषामुन्नतं तेजो भूयात्तव पराक्रमः ॥५९॥
राजराजो भवाद्यादिरुदीच्यां भव दिक्पतिः। तत्रस्थानां हि कर्त्ता त्वं मेरोर्मे हि प्रसादतः ॥६०॥
भूयो नवनिधीनां च पालको भव मे तथा। कोटयश्च द्विपञ्चाशन्[२७] मत्तः प्रगृह्यतां भवान् ॥६१॥
अद्य प्रभृति भक्तस्त्वं मम सखा भवानिशम्। न मुञ्चामि क्षणं हि त्वां प्रियभक्त कुबेर हे ॥६२॥

स्कन्द उवाच

प्रदायैवं वरं रुद्रो देवानृषीन्समाह्वयत्। स्वाध्यक्षे प्रियभक्तायाऽभिषेकं दातुमेव हि[२८] ॥६३॥
ततः समाययुर्देवा[२९] ब्राह्मणाः सपुरोहिताः। ऋषयश्च तथा सिद्धा यक्षगन्धर्वकिन्नराः ॥६४॥
ईश्वरस्य समादाय चाऽऽज्ञां लोकपितामहः। अभिषेकं ददौ तस्मै तीर्थतोयैः प्रपूरितैः[३०] ॥६५॥
हिरण्यकलशैर्भव्यैः सिद्धा जेपुर्मनुं मुदा[३१]। ऋषयो व्याहृतिं स्मृत्वा स्तोत्रैर्देवगणास्तथा ॥६६॥

---

सम्पूर्ण प्राणीको पाप हरण गर्ने ईश्वरलाई नमस्कार छ। खिया-मैला केही नभएका अर्थात् पापरहित निरञ्जन ईश्वरलाई नमस्कार छ। कसैमा लिप्त नभएका, तेजस्वरूप ईश्वरलाई नमस्कार छ। सबै प्राणीहरूका वन्दनीय शाश्वत परमेश्वरलाई नमस्कार छ। अत्यन्त कालो अन्धकारले व्याप्त संसाररूपी समुद्रमा डुबेको व्यक्तिलाई जसले जन्म र मृत्युको बन्धनबाट मुक्त गर्नुहुन्छ, त्यस्ता देवतालाई नमस्कार छ ॥५२-५५॥

कार्तिक स्वामीले भन्नुभयो - हे अगस्त्य मुनि ! कुबेरको स्तुति सुनेपछिअत्यन्त प्रसन्न हुनुभएका महादेव तिनको नजिकै आविर्भाव हुनुभयो। भगवान् शिवले इन्द्रियलाई दमन गरेर प्रगाढ भक्तिमा निमग्न भएका आफ्ना तपस्वी भक्तलाई देखेर वर दिनका लागि भन्नुभयो ॥५६-५७॥

महादेवले भन्नुभयो - अहो ! तिमी साह्रै धन्य रहेछौ, ममा तिम्रो अटूट भक्तिभावना रहेछ। हे गुह्यकेश्वर ! तिमी तीनै किसिमका तपस्याले युक्त भएका छौ। हे भक्त ! तिमीलाई जे इच्छा लाग्छ, त्यही वर माग। सबभन्दा उत्तम तेज र पराक्रम तिमीलाई प्राप्त होस्। तिमी आजदेखि राजाहरूका पनि राजा (महाराजाधिराज) होऊ, उत्तर दिशाका दिक्पाल बन। मेरो कृपाले तिमी सुमेरु पर्वतमा बस्ने प्राणीहरूका कर्ता बन। यस्तै तिमी मेरा नौवटा खानीका रक्षक बन। बाउन्न करोड खनिजद्रव्य मबाट तिमीले प्राप्त गर। प्रियभक्त हे कुबेर ! आजदेखि तिमी सधैं मेरा मित्र बन। म तिमीलाई एक क्षण पनि छाड्दिनँ ॥५८-६२॥

कार्तिक स्वामीले भन्नुभयो - यसरी वरदान दिएर महादेवले आफ्नै सामुन्नेमा आफ्ना प्यारा भक्तलाई अभिषेक दिलाउन तत्कालै देवता तथा ऋषिहरू बोलाउनुभयो ।त्यसपछि देवता, ब्रह्मा, पुरोहित, ऋषि, सिद्ध, यक्ष, गन्धर्व र किन्नरहरू त्यस स्थानमा आए। महादेवको निर्देशन अनुसार लोकका पितामह ब्रह्माजीले वेद पाठ गर्दै तीर्थका जलले भरिएका मङ्गलमय भव्य सुनका कलशहरूले कुबेरलाई अभिषेक गर्नुभयो। त्यस समयमा सिद्धहरूले मन्त्र जपे, ऋषिहरूले गायत्रीको स्मरण गरे र देवताहरूले स्तुतिपाठ गरे। त्यसपछि बृहस्पतिले अनेक किसिमका पूजासामग्रीले उनको पूजा गरे, सम्मान गरे अनि आशीर्वाद पनि दिए। त्यसपछि नगराहरू बजे, गन्धर्व तथा किन्नरहरूले गीत गाए, फूलको वर्षा भयो, आकाशमा जय-जयकार ध्वनि घन्कियो। ।६३॥

---

२५. शाश्वते वै, इति न.सं.पु.पाठः।
२६. हर्षं वरं दातुं स्वभक्तिने, इति न.सं.पु.पाठः।
२७. द्विपञ्चाशच्च कोटीनाम्, इति न.सं.पु.पाठः।
२८. दातुं तत्क्षणात, इति न.सं.पु.पाठः।
२९. ततः समाययुर्देवाः स, इति न.सं.पु.पाठः।
३०. प्रपूरकैः, इति न.सं.पु.पाठः।
३१. सिद्धा मन्त्रं जपंस्तथा, इति न.सं.पु.पाठः।

ततः प्रार्च्य[३२] गुरुर्दिव्यैश्चन्दनैर्विविधैस्तदा। अर्हयामास पूजाभिराशीर्वादं ददौ पुनः ॥६७॥
ततो दुन्दुभयो नेदुर्जगुर्गन्धर्वकिन्नराः। ववृषुः[३३] कुसुमासारा आसीज्जयरवो दिवि ॥६८॥
उदीच्यां दिशि संस्थाप्य कुबेरं मेरुशेखरे। तिरोधानं ययौ रुद्रो देवाः स्वां स्वां दिशं ययुः ॥६९॥
महेश्वरोऽपि प्रसभं दिगीशोऽभवच्च विप्राऽऽर्य्य यदृच्छयादौ।
हिमाद्रिकूटे स्वयमेव चक्रे तपः कठोरं सुरदुर्ल्लभं च ॥७०॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे ज्ञानतीर्थमाहात्म्ये कुबेरतपःसिद्धिर्नामोनविंशतितमोऽध्यायः ॥१९॥

---

सुमेरुको शिखरमा उत्तरपट्टिको दिशामा कुबेरको स्थापना गरेर महादेव अन्तर्धान हुनुभयो। त्यसपछि देवताहरू पनि आफ्नो–आफ्नो दिशातिर लागे ॥६४–६९॥

हे अगस्त्य मुनि ! अघि महादेव पनि आफ्नै खुसीले आफू पनि दिक्पाल बन्नुभयो, उहाँले हिमालयको शिखरमा रहेर स्वयं आफैँले पनि देवताहरूले गर्न नसक्ने कठोर तपस्या गर्नुभएको थियो ॥७०॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा ज्ञानतीर्थको महिमा र उत्तरदिशाको दिक्पालका रूपमा कुबेरको अभिषेकनामक उन्नाइसौँ अध्याय पूर्ण भयो।

---

३२. ततश्चार्च्य, इति न.सं.पु.पाठः।
३३. ववर्षुः, इति न.सं.पु.पाठः।

# विंशतितमोऽध्यायः

तपस्यातो रुद्रस्य निवृत्तये देवानां मन्त्रणम्

अगस्त्य उवाच

सर्वज्ञोऽसि महासेन सर्ववार्ताविशारद। तपोरूपः स्वयं रुद्रो हर्त्ता कर्त्ता च रक्षकः ॥१॥
लोकानां वरदो नित्यं फलदश्च तपस्विनाम्। स कथञ्च तपस्तेपे भगवान् भूतभावनः ॥२॥
ज्योतीरूपो महादेव इच्छारूपो महाविभुः। निर्विकारश्च सद्देवस्तेजःपुञ्जो विभाव्यते ॥३॥
अलक्ष्यः सर्वलोकानां प्राप्नुवन्ति यतः सुराः[1]। वाञ्छितानि फलान्यार्य्य तेन प्राप्तं कुतः फलम् ॥४॥
भोक्ता स एव भोज्यं च यज्ञरूपः स एव हि। हविर्घृतं तथा द्रव्यं यजमानः स एव हि ॥५॥
होता वह्निस्तथा मन्त्रो वेदा जप्यः स एव च। लोकसाक्षी स एवाऽऽर्य्यः सर्वदेवाश्रयो विभुः ॥६॥
इति मे संशयो जातः श्रुत्वाश्चर्य्यं निवेदये। छिन्धि तं मम सेनानीः प्रियवागसि त्वं[2] ध्रुवम् ॥७॥

स्कन्द उवाच

तेजस्विनाञ्च देवानाञ्चरितं परमाद्भुतम्। न कृतोऽत्र च सन्देहो मुनिभिश्च पुरा द्विज ॥८॥
लोकानां धर्मरक्षायै[3] लोकसंस्थापनाय च। स तपोधर्मरूपोऽपि धर्मं समाचरद्विभुः ॥९॥
धर्मेण संस्थिता पृथ्वी सपर्वता ससागरा। सत्यवती च धर्मेण धर्माज्जीवनदो घनः ॥१०॥

---

अध्याय- २०

भगवान् रुद्रको तपस्थलीमा उहाँलाई तपस्याबाट निवृत्त गराउँन देवताहरूको मन्त्रणा

अगस्त्य मुनिले भन्नुभयो – हे कार्तिक स्वामी ! हजुर सम्पूर्ण विषयका ज्ञाता हुनुहुन्छ, सर्वज्ञ हुनुहुन्छ। तपोमूर्ति रुद्र स्वयम् हर्ता, कर्ता र रक्षक पनि हुनुहुन्छ। प्राणीहरू लाई सधैं वर दिन सक्ने र तपस्वीहरूलाई उनीहरूले गरेको तपस्याको फल दिन सक्ने भएर पनि भूतभावन भगवान् शङ्करले किन तपस्या गर्नुभयो ? महादेव आफैं ज्योतिस्वरूप हुनुहुन्छ, इच्छा अनुसार विभिन्न रूप लिन सक्नुहुन्छ, व्यापक तथा विकाररहित सच्चा देवता र तेजपुञ्ज हुनुहुन्छ। सबै प्राणीहरूका लागि अगम्य जुन ईश्वरबाट देवताहरूले इच्छाअनुसारको फल प्राप्त गर्न सक्छन् त्यस्ता ईश्वरले तपस्या गरेर कसबाट के फल पाउनुभयो ? महादेव आफैं भोक्ता, भोज्य तथा यज्ञरूप पनि हुनुहुन्छ। यस्तै उहाँ आफैं हवनीय द्रव्य, चरु, घ्यू र यजमान पनि हुनुहुन्छ। होता, अग्नि, मन्त्र, वेद तथा जपिने देवता पनि उहाँ आफैं हुनुहुन्छ। भगवान् शङ्कर नै लोकको साक्षी, सम्पूर्ण प्राणीका आश्रयदाता हुनुहुन्छ। हे कार्तिक स्वामी ! हे प्रभो ! शङ्करले तपस्या गर्नुभयो भन्ने कुरा सुन्दा मलाई अत्यन्त आश्चर्य लागेको छ। शङ्का निवारण गरी उपदेश गर्न योग्य हजुरले मेरो शङ्काको निवारण गरिदिनुहुन निवेदन गर्दछु ॥१–७॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! शक्तिशाली देवताहरूको चरित्र अत्यन्त आश्चर्यजनक हुन्छ। यस विषयमा अघि ऋषिहरूले पनि प्रश्न गरेका थिएनन्। प्राणीहरूको धर्मको रक्षा र संसारमा स्थिति स्थापना गर्नका लागि तपस्या र धर्मका मूर्ति भएर पनि भगवान् शङ्करले धर्म गर्नुभएको हो। पर्वत तथा समुद्रले युक्त भएकी पृथ्वी धर्म र सत्यमा नै अडेकी छन्। बादलले पनि धर्मका आडमा प्राणीहरूलाई जीवन अर्थात् पानी दिइरहेको छ ॥८–१०॥

---

१. यतः प्राप्यन्ति देवताः, इति न.सं.पु.पाठः।
१क. त्वयि प्रभो, इति न.सं.पु.पाठः।
२. त्वंसुवचोऽसि नो, इति न.सं.पु.पाठः।
३. धर्मरक्षाय लोकानाम्, इति न.सं.पु.पाठः।

धर्मेण भाग्यमाप्नोति धर्मेणाऽऽप्नोति सन्ततिम्[४] । चिरञ्जीवति धर्म्मेण पुरुषायुश्च लभ्यते ॥११॥
धर्मेणाऽऽनन्द्यते चेतः[५] सुखं धर्म्मेण लभ्यते । या वाञ्छा विद्यते स्वान्ते धर्मेण सा प्रलभ्यते ॥१२॥
लोभमोहौ तथा क्रोधो मदो मात्सर्यमेव च । दुःखक्लेशौ च दारिद्र्यमधर्म्मेण भवन्ति वै[६] ॥१३॥
तस्मात्सदसतीं कर्त्तुं स्थितिं सदसदात्मकः । सर्वलोकहितायासौ[७] तपश्चकार भक्तिवित् ॥१४॥

अगस्त्य उवाच

कस्मिन्स्थाने च तीर्थेऽसौ तपश्चक्रे स्वयं विभुः । कमाराध्य महातेजाः सर्वदेवमयो हरः ॥१५॥
एतदिच्छाम्यहं श्रोतुं त्वत्तः सर्वज्ञपुत्रतः । त्वदीया ह्यनुकम्पा[८] चेन्मयि तद् वद मे विभो ॥१६॥

स्कन्द उवाच

आसन्नेकादश रुद्रा अंशा ज्योतिर्मयस्य च । तेषां मध्ये वरैकांश ईशानः प्राकरोत्तपः ॥१७॥
पूर्वोत्तरदिशोर्मध्ये तेजोऽचलः सुशोभनः[९] । तदधश्च महातीर्थं सर्वतीर्थोत्तमोत्तमम्[१०] ॥१८॥
चित्रा नदी महापुण्या वह्नितेजास्तथापरा । भस्मपङ्का तथा पुण्या तासां सुसङ्गमे मुने ॥१९॥
भस्मतीर्थमिति ख्यातं सर्वतीर्थफलप्रदम्[११] । तत्र स्नात्वा दिवं यान्ति सदेहा नात्र संशयः ॥२०॥
स्नात्वा जप्त्वा महारुद्रं[१२] रुद्रलोके महीयते । पश्यति भस्मतीर्थं यः सर्वपापैः प्रमुच्यते ॥२१॥
जम्बूद्वीपोद्भवेष्वार्य्य कोटित्रयार्द्धकोटिषु[१३] । तीर्थेषु यत्फलं स्नात्वा मर्त्योऽपि लभते मुने ॥२२॥
तत्फलं लभते[१४] मर्त्यः सर्वतीर्थफलप्रदे । सकृदाप्लवमात्रेण भस्मतीर्थे सुसङ्गमे ॥२३॥

---

मानिसले धर्मबाट नै भाग्य प्राप्त गर्छ, धर्मबाट नै सन्तान उपलब्ध हुन्छ र धर्मबाट नै, पुरुषलाई सय वर्षको पूर्णाय प्राप्त हुन्छ। धर्मबाट नै मन आनन्दित हुन्छ, धर्मबाट नै सुख प्राप्त हुन्छ। मनमा जे इच्छा लागेको छ त्यो सबै धर्मबाट नै प्राप्त हुन्छ। लोभ, मोह, क्रोध, मद, मात्सर्य, दुःख, क्लेश र दारिद्र्य भने अधर्मबाट प्राप्त हुन्छन्। सत् तथा असत् स्वरूप भएका भक्तिविशेषज्ञ भगवान् शङ्करले सबै प्राणीको हितलाई मनमा राखेर असल र खराबको स्थिति मिलाउन तपस्या गर्नुभएको हो। सम्पूर्ण देवताका आत्मस्वरूप तेजस्वी भगवान् शिवले कुन ठाउँमा, कुन तीर्थमा, कसलाई पूजा गरेर तपस्या गर्नुभयो ? हे शिवपुत्र ! हजुरबाट म यो कुरा सुन्न चाहन्छु। यदि ममाथि हजुरको कृपा छ भने मलाई बताउनुहोस् ॥११-१६॥

कार्तिक स्वामीले भन्नुभयो - ज्योतिस्वरूप भगवान्का एघार वटा अंशावतार रुद्रहरू छन्। ती मध्ये ईशान नाम गरेका एक अंशावतारले तपस्या गर्नुभएको थियो। सुमेरु पर्वतको पूर्व र उत्तर अर्थात् ईशान दिशामा एउटा उज्वल सुन्दर शिखर छ। त्यसैको फेदीमा सबै तीर्थहरूमध्ये उत्तम महातीर्थ रहेको छ। त्यहाँ अत्यन्त पुण्यदायिनी चित्रा नदी र अग्निभन्दा पनि बढी तेज भएकी पवित्र भस्मपङ्का नाम गरेका नदी छन् ॥१७-१९॥

तिनीहरूको सङ्गममा सबै तीर्थमा गरेका कार्यको फल दिने भस्मतीर्थ नाम गरेको तीर्थ छ। त्यस तीर्थमा स्नान गर्नाले मानिसहरू सशरीर स्वर्ग जान्छन्, यसमा शङ्का छैन। त्यस तीर्थमा स्नान गरेर रुद्रको मन्त्र जप गर्नाले मानिस रुद्रलोकमा पुग्दछ। जसले भस्मतीर्थको दर्शन गर्छ त्यो सबै पापबाट मुक्त हुन्छ। जम्बूद्वीपमा भएका साढे तीन करोड तीर्थमा स्नान गर्नाले मानिसले जुन फल पाउँछ, सम्पूर्ण तीर्थको फल दिने यस सुन्दर सङ्गम भएको भस्मतीर्थमा एक पटक मात्रै भए पनि डुबुल्की मार्नाले त्यो सबै फल प्राप्त हुन्छ ॥२०-२३॥

---

४. धर्मेण सन्ततिं लभेत्, इति न.सं.पु.पाठः ।
५. धर्मेणानन्दयेच्चेतः, इति न.सं.पु.पाठः ।
६. प्रलभ्यते, इति न.सं.पु.पाठः ।
७. सर्वलोकहितामासौ, इति न.सं.पु.पाठः ।
८. श्रीमतामनुकम्पा, इति न.सं.पु.पाठः ।
९. तेजोऽचलसुशोभनः, इति न.सं.पु.पाठः ।
१०. महातीर्थः सर्वतीर्थोत्तमोतमः, इति न.सं.पु.पाठः ।
११. भस्मतीर्थ इति ख्यातः सर्वतीर्थफलप्रदः, इति न.सं.पु.पाठः ।
१२. प्रजपिता रुद्रम्, इति न.सं.पु.पाठः ।
१३. तिस्रः कोट्यर्द्धकोटिषु, इति न.सं.पु.पाठः ।
१४. लभ्यते, इति न.सं.पु.पाठः ।

अगस्त्य उवाच

भस्मतीर्थं महापूतं सर्वतीर्थफलोद्भवम्। त्वया प्रोक्तं महासेन भस्मतीर्थमभूत् कथम्[१५] ॥२४॥
चकार तप ईशानः कथं स भगवान् गुह। त्रिदेवात्माऽपि तेजस्वी भूतस्वान्तःस्थितोऽनिशम् ॥२५॥

स्कन्द उवाच

भस्मना च यदेशानः स्नानं चक्रे शिलोच्चये। तदङ्गभस्मनो जाता नदी पुण्यवती वरा ॥२६॥
ततः शिलोच्चयाद्धीर प्रपतिता सुनिर्म्मला। भस्मपङ्केति विख्याता तयोः सङ्गमगामिनी ॥२७॥
यत्र सस्नौ महेशानः सर्वदेवाभिकाङ्क्षिते। ततस्तेजोऽचले विप्र रुरोह स महामनाः ॥२८॥
तस्य कूटे महापूते सर्वरत्नसुसम्भवे। हिरण्यमयभूमौ च सर्वदेवाभिकाङ्क्षिते ॥२९॥
अगम्ये देवसत्त्वानां तुषारपुञ्जभूषिते। मणिमयस्थलोत्सेधे चन्द्रार्कसदृशोज्ज्वले[१६] ॥३०॥
तत्र दिव्यासनासीनो भूत्वा चोदङ्मुखो विभुः। दध्यौ परापरामाद्यां देवीं ब्रह्मपरां शिवाम्[१७] ॥३१॥
दिव्यवर्षशतं साग्रं जजाप स महाविभुः। ततो जपावसाने च देवाश्चिन्ताकुला मुने ॥३२॥

देवा ऊचुः

यं विना च पुरा शक्रः प्राप्तवान् सङ्कटं महत्[१८]। ज्ञात्वेदानीमिह स्थाने नास्ति रुद्र इति ध्रुवम् ॥३३॥
इहागत्य च दैत्यास्ते हर्षनिर्भरमानसाः। करिष्यन्ति पुनर्युद्धं लुन्ठन्तश्चाऽमरावतीम्[१९] ॥३४॥

इन्द्र उवाच

गम्यतां भोऽमराः सर्वे यत्र तिष्ठति माधवः। तस्मै निवेद्यतां वार्त्ता शम्भोश्च तपसश्च नः ॥३५॥
समाकर्ण्य च तद्वार्त्तामस्माभिर्यां निवेदिताम्। वदिष्यति यथा विष्णुः करिष्यामस्तथाविधम्[२०] ॥३६॥

---

अगस्त्यले भन्नुभयो – हे कार्तिक स्वामी ! हजुरले सम्पूर्ण तीर्थको फल दिने र अत्यन्त पवित्र भस्मतीर्थको बारेमा बताउनुभयो। त्यो भस्मतीर्थ कसरी बन्यो ? ब्रह्मा, विष्णु र रुद्र तीनै देवताका आत्मा भएका सम्पूर्ण प्राणीका हृदयमा बस्ने भगवान् शङ्करले त्यहाँ कसरी तपस्या गर्नुभयो ? ॥२४–२५॥

कार्तिकेय भन्नुहुन्छ– भस्म लगाएका शिवजीले जुन पहाडमा स्नान गर्नुभयो , उहाँकै अङ्गमा लागेको भस्मबाट पवित्र नदी उत्पन्न भइन् र त्यस पर्वतको शिखरबाट बिस्तारै स्वच्छ भएर झरिन्। त्यसैले तिनको नाम भस्मपङ्का भयो। तिनी गएर अर्को नदीसँग सङ्गममा मिलिन् ॥२६–२७॥

हे अगस्त्य मुनि ! सम्पूर्ण देवताहरूले रुचाएको त्यस पर्वतमा पुगेर महामना भगवान् शङ्करले स्नान गर्नुभयो। त्यसपछि तेजस्वी रुद्र त्यस पर्वतमा चढ्नुभयो। अत्यन्त पवित्र, सम्पूर्ण रत्नहरूले युक्त, सुवर्णमय भूमिले सम्पन्न, सबै देवताहरूको मनलाई हरण गर्ने, देवता र अरू प्राणीहरूका निमित्त अगम्य, तुषाराले अत्यन्त सुशोभित, मणिमय स्थल र शिखर भएको तथा चन्द्रमा र सूर्यभन्दा पनि उज्वल त्यस शिखरमा बसी उत्तरपट्टि फर्किएर भगवान् शिवले सबैभन्दा पहिले उत्पन्न भएकी आद्या भगवती देवीको चिन्तन गर्नुभयो। भगवान् शिवले दिव्य सय वर्षभन्दा पनि बढी जप गर्नुभयो। उहाँको जपको अन्तिम समयमा देवताहरू चिन्तित भएर आत्तिए ॥२८–३२॥

देवताहरूले भने – भगवान् शङ्कर नहुँदा पहिले इन्द्र ठूलो सङ्कटमा परेका थिए। अहिले पनि भगवान् रुद्र यहाँ हुनुहुन्छ भन्ने कुरा थाहा पाएर ती दैत्यहरूले अत्यन्त प्रसन्न हुँदै युद्ध गर्नेछन् र अमरावतीलाई लुट्नेछन् ॥३३–३४॥

इन्द्रले भने – हे देवता हो ! तिमीहरू सबै जहाँ भगवान् विष्णु बस्नुभएको छ, त्यहाँ गएर शिवजीले तपस्या गरेको वृत्तान्त उहाँलाई निवेदन गर। हामीले निवेदन गरेको त्यो कुरा सुनेर भगवान् विष्णुले जे भन्नुहुन्छ त्यही गरौंला ॥३५–३६॥

---

१५. भस्मतीर्थं कथं भवेत्, इति न.सं.पु.पाठः।
१५क. बहुतुषारभूषिते, इति न.सं.पु.पाठः।
१६. चन्द्रार्कयोः समोज्ज्वले, इति न.सं.पु.पाठः।
१७. ब्रह्मपरापरां शिवाम्, इति न.सं.पु.पाठः।
१८. प्राप्तं महत्सुसङ्कटम्, इति न.सं.पु.पाठः।
१९ लुण्ठन्ति चामरावतीम्, इति न.सं.पु.पाठः।
२०. कुर्वामो हि, इति न.सं.पु.पाठः।

बृहस्पतिरुवाच

साधु शक्र त्वयोक्तं नः पथ्यञ्च तन्न संशयः। अस्माभिः सम्मतं पूर्वं हृदि मे तच्च वर्त्तते ॥३७॥
गच्छामो हि[२१] महात्मानो यत्राऽसौ गरुडध्वजः। तत्र सम्मन्त्रयिष्यामः[२२] स्थातव्यमत्र मा चिरम् ॥३८॥

स्कन्द उवाच

एवं सम्भाषितं श्रुत्वा गुरोश्च[२२क] वचनं मुदा। मत्वा च स्वात्मनः[२३] पथ्यं जग्मुर्यत्र हरिर्मुने ॥३९॥
ततो नेमुः सुराः सर्वे विष्णुं ब्रह्म सनातनम्। परिक्रम्य यथायोग्यं स्तोत्रार्हणैरपूजयन् ॥४०॥

विष्णुरुवाच

कुशलं स्वागतं देवा भद्राणि सन्ति वोऽनिशम्। राज्येषु च शरीरेषु तथा वित्तेषु साम्प्रतम् ॥४१॥
जातमागमनं[२४] किं वः सम्भूय गुरूपूर्वकम्। वदताऽत्र तथा तथ्यं ममाऽग्रे भो हविर्भुजः ॥४२॥

बृहस्पतिरुवाच

स्वागताश्च वयं विष्णो तव प्रसादतोऽधुना ॥४३॥
अस्माकमतिभीतानां वार्त्ताञ्च ते वदाम्यहम्। हिमालये नगश्रेष्ठे रुद्रो जपति भो चिरम् ॥४४॥
आक्रमिष्यन्ति मत्वेति दानवास्तेऽमरावतीम्। रुद्रं विना कथं तत्र स्थातव्यमिति शङ्किताः[२५] ॥४५॥
इहागता महाविष्णो रुद्रमुत्थापय प्रभो।

स्कन्द उवाच

इत्याकर्ण्य वचो विष्णुराङ्गिरसमुखाच्च्युतम् ॥४६॥
सम्मतञ्चैव देवानां सर्वलोकहितं तथा। विचार्य देवकार्यं[२६] वै विष्णुर्ब्रह्माणमाह्वयत् ॥४७॥
ततः सोऽमन्त्रयद्धीरो[२७] ब्रह्मणा सह साम्प्रतम्। आहूय सर्वदेवांश्च चन्द्रार्कौ नारदं तथा ॥४८॥
देवर्ष्याङ्गिरसैर्युक्तो ययौ विष्णुर्हिमालयम्। यत्रातपत् महारुद्रः[२८] सर्वदेवमयो विभुः ॥४९॥

---

बृहस्पतिले भने – हे इन्द्र ! तपाईंले जे कुरा भन्नुभयो, त्यो उचित छ, यसमा शङ्का छैन। यो कुरा हामीले पनि पहिले सोचेका थियौं। जहा भगवान् विष्णु बस्नुहुन्छ, त्यहाँ तपाईंहरू पनि हिँड्नुहोस्। यस विषयमा हामी त्यहीं गएर सल्लाह गरौं, यहाँ धेरैबेर बस्नु हुँदैन ॥३७–३८॥

कार्तिक स्वामीले भन्नुभयो – तिनीहरूको यस्तो भनाइ सुनेर त्यस्तो गर्दा आफ्नो कल्याण हुने ठानी देवताहरू जहाँ भगवान् विष्णु बस्नुभएको थियो, त्यहाँ गए र सनातन ब्रह्मस्वरूप विष्णुलाई नमस्कार गरेर परिक्रमा तथा यथोचित स्तुति गरी विभिन्न पूजासामग्रीले पूजा गरे ॥३९–४०॥

विष्णुले भन्नुभयो – हे देवता हो ! तिमीहरूलाई स्वागत छ। तिमीहरूलाई राज्य, शरीर र सम्पत्तिमाथि कुनै अनिष्ट त परेको छैन ? बृहस्पतिलाई अगाडि लगाएर सबै एकत्रित भई आउनुको कारण के हो ? मेरा अगाडि यथार्थ कुरा बताओ ॥४१–४२॥

बृहस्पतिले भने – विष्णुको कृपाले गर्दा अहिलेसम्म हामी सञ्चै छौं। हामी आउनाको कारण म बताउँछु। पर्वतराज हिमालयमा शिवजी गएर धेरै समय अघिदेखि जप गर्न थाल्नुभएको छ। यही अवसर पारेर राक्षसहरूले अमरावतीमाथि आक्रमण गर्नेछन्। शिवजी विना त्यहाँ बस्न सक्दैनौं भन्ने अठोट गरेर हामी यहाँ आएका छौं। हे महाविष्णु ! शिवजीलाई उठाउनुहोस् ॥४३–४५½॥

कार्तिक स्वामीले भन्नुभयो – बृहस्पतिको मुखबाट निस्किएको यस्तो कुरा सुनेर विष्णुले सबै प्राणीको हितकारक विषयमा देवताहरूको विचार लिएर, गर्नुपर्ने कर्तव्यको बारेमा चिन्तन गरी ब्रह्मालाई बोलाउनुभयो। त्यसपछि ब्रह्माजीसँग सल्लाह गरेर विष्णु भगवान् सबै देवता, चन्द्रमा, सूर्य, नारद, बृहस्पति तथा देवर्षिलाई साथमा लिएर हिमालय पर्वतमा जानुभयो। त्यहाँ सम्पूर्ण देवताका स्वरूप भगवान् रुद्र तपस्या गरिरहनुभएको थियो ॥४६–४९॥

---

२१. गच्छध्वञ्च, इति न.सं.पु.पाठः। २२. सम्मन्त्रयामो वै, इति न.सं.पु.पाठः। २२क. तेषां च, इति न.सं.पु.पाठः।
२३. स्वात्मना, इति न.सं.पु.पाठः। २४. कार्यम्, इति न.सं.पु.पाठः।
२५. निश्चयः, इति न.सं.पु.पाठः। २६. तत्कार्यं चिन्त्य, इति न.सं.पु.पाठः।
२७. सम्मन्त्रयद्धीर, इति न.सं.पु.पाठः। २८. यत्र तपति रुद्रोऽसौ, इति न.सं.पु.पाठः।

ततो दृष्ट्वा महेशं तं[२९] तपःस्थितं विभुं मुने। सर्वज्योतिर्मयं देवं सूर्यकोटिप्रभायुतम् ॥५०॥
चन्द्रकोटिसमुद्योतं भासयन्तं दिशो दश। सन्दृश्य चाऽऽत्मभूर्भूयो मन्त्रयामास तैः सुरैः[३०] ॥५१॥
भयं किञ्चित्समाविष्ट उवाच वचनं मुने।

ब्रह्मोवाच

अहोऽजस्य तपःस्थस्य व्रजामश्चाऽन्तिकं कथम् ॥५२॥
सत्यमुक्तं मया विष्णो तस्यैवाऽनुग्रहं विना। तेजःपुञ्जस्य वैकुण्ठमहोग्रतेजसः सुराः ॥५३॥
सत्यं लीना भविष्यामो[३०क] गन्तारश्चेत्तदन्तिकम्। यथा च वह्निकीलायां शलभा नैव संशयः ॥५४॥
सन्देहस्था वयं सर्वे किं विधेयमतःपरम्।

स्कन्द उवाच

समाकर्ण्य वचो देवा ब्रह्मणो हितभाषितम् ॥५५॥
बभूवुस्ते च निर्यत्ना गन्तुमपि तदन्तिकम् ॥५६॥

रविरपि किल गन्तुं तत्समीपे न शक्तः खरतरकिरणोऽसौ कम्पमानो बभूव[३१]।
सुरवरसहितोऽजो मन्त्रयन् सर्वदेवैः[३२] पुनरपि न हि शक्ताः तत्र गन्तुं सुरास्ते[३३] ॥५७॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे रुद्रतपःस्थाने देवमन्त्रणं नाम विंशतितमोऽध्यायः ॥२०॥

---

त्यसपछि ब्रह्माले तपस्यामा तत्पर सम्पूर्ण ज्योतिस्वरूप भएका करोडौं सूर्य र चन्द्रमाको तेजजस्तै चम्किला दशै दिशालाई प्रकाशित पार्ने भगवान् शिवलाई देख्नुभयो र उहाँले देवताहरूसँग सल्लाह गरेर केही डराउँदै भन्नुभयो ॥४८-५१½॥

ब्रह्माजीले भन्नुभयो – हे विष्णु ! तपस्यामा तत्पर, अजन्मा, भगवान् शिवजीको नजिकमा उहाँको कृपाविना कसरी जाने ? यो मैले सत्य भनेको हो। है वैकुण्ठ हामी सबै देवताहरू यदि उग्रतेज भएका भगवान् शङ्करको नजिक गयौं भने आगाको ज्वालामा पुतलीझैं भस्म हुनेछौं, यसमा शङ्का छैन। त्यसैले जाने कि नजाने, अब के गरौं ? ॥५२-५४॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! प्रखर किरणका मालाले सुहाएका सूर्यनारायण पनि भगवान् शिवका समीपमा जान सकेनन् र थरथर काँपिरहे। नारायणसहितका ब्रह्माजी देवतासँग मन्त्रणा गर्न लाग्नुभयो। ब्रह्माजीको सल्लाह पाएका र उत्साहित बनाइएका देवताहरू फेरि पनि शिवका समक्ष जान असमर्थ भए ॥५५-५६॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा रुद्रले तपस्या गर्नुभएको स्थानमा देवताहरूबाट गरिएको मन्त्रणा नामक बीसौं अध्याय पूर्ण भयो।

---

२९. ददर्श महेशं तपस्थितम्, इति न.सं.पु.पाठः।
३०. दैवतैः, इति न.सं.पु.पाठः।
३०क. विलीनाः स्मो वयं सत्यम्, इति न.सं.पु.पाठः।
३१. कम्पदेहो मुहुर्वै, इति न.सं.पु.पाठः।
३२. सुरवरकथितोऽजो देवसम्मन्त्र्य विप्र, इति न.सं.पु.पाठः।
३३. कमलजवचनैर्वै शङ्करस्यान्तिकञ्च, इति न.सं.पु.पाठः।

# एकविंशतितमोऽध्यायः

भगवत ईशानस्यैशान्यदिक्पालत्वेनाभिषेकः

अगस्त्य उवाच

अंशोऽयमीश्वरस्याऽऽद्यस्त्वयोक्तं मे शिवात्मज। रौद्रतेजा महादेवो लोकसाक्षीति नः श्रुतम् ॥१॥
कथं सूर्यो महातेजाः प्रगन्तुञ्च तदन्तिके। न शक्तवान् कथं रुद्रोऽसह्यतेजास्तदाऽभवत्[1] ॥२॥

स्कन्द उवाच

ब्रह्मणो वचनं श्रुत्वा बृहस्पतिमुखाः सुराः। प्रहृष्टास्ते[1क] तदा धीर साधु साध्विति वादिनः ॥३॥
आहूय पूषणं देवं कथयामासुरादृतम्। विमृश्य सर्वदेवैश्च हरोत्थानाय साम्प्रतम् ॥४॥

देवा ऊचुः

आदिदेव महातेजाः सर्वसत्त्वानुकम्पक। त्वं स्रष्टा सर्वभूतानां रुद्रतेजा न संशयः ॥५॥
गच्छ सूर्य महादेवरुद्रस्य चाऽन्तिकं ततः। गत्वा तपःस्थितं देवं वन्दस्व भक्तिभावतः[2] ॥६॥

सूर्य उवाच

अहो मम विनाशाय यूयं समुद्यता ध्रुवम्। कोऽनुयास्यति नाशाय स्वात्मनोऽज्ञं विना सुराः ॥७॥
यस्य तेजोऽतिसह्यं यद्यस्य घोरेक्षणेऽनलः। तेजोमयस्य चांशोऽहं यस्य कोट्यंशसम्भवः ॥८॥
यस्योन्मेषनिमेषाभ्यां[3] लोकस्य प्रलयोद्भवौ। तपःस्थस्याऽन्तिकं गन्तुं शक्यते न मया विभो ॥९॥

अङ्गिरस उवाच

भो हिमांशो महावीर चाऽस्मभ्यमनुकम्पय। देवानाञ्च हितार्थाय रक्षायै सुरसद्मनः ॥१०॥
नाशायाऽस्मद्भयानाञ्च गत्वा चन्द्र तदन्तिके। तव स्वकिरणैः शीतैरुग्रता सा[4] प्रशाम्यताम् ॥११॥

---

## अध्याय- २१

ऐशान्य दिशाको दिक्पालका रूपमा भगवान् रुद्रको अभिषेक

अगस्त्यले भन्नुभयो – हे कार्तिक स्वामी ! तपाईंले रुद्रलाई ईश्वरको एउटा अंश भन्नुभयो। भगवान् शङ्कर अत्यन्त कडा तेज भएका लोकसाक्षी महादेव हुनुहुन्छ भन्ने कुरा हामीले सुनेका छौं। त्यस्ता भगवान्‌का नजिकै असह्य तेज भएका सूर्य पनि कसरी जान सकेनन् ? बताउनुहोस् ॥१-२॥

कार्तिक स्वामीले भन्नुभयो – ब्रह्माको कुरा सुनेर बृहस्पति आदि गरेका देवताहरूले प्रसन्न हुँदै ठीक हो ठीक हो भने अनि सूर्यलाई बोलाएर शिवजीलाई उठाउनका लागि शिवजीको नजिकै जान अनुरोध गरे ॥३-४॥

देवताहरूले भने – हे महातेज भएका आदिदेव ! हजुर सबै प्राणीलाई कृपा गर्नुहुन्छ। शिवको तेजस्वरूप भएका हजुर सबै प्राणीका स्रष्टा हुनुहुन्छ। हे सूर्य ! हजुर महादेवको नजिकै जानुहोस् र त्यहाँ गएर इच्छा अनुसार तपस्यामा तत्पर महादेवलाई नमस्कार गर्नुहोस् ॥५-६॥

सूर्यले भने – हे देवता हो ! तिमीहरू मेरो विनाश गर्न खोज्दैछौ, मूर्ख बाहेक कुन व्यक्ति सबैका आत्मा भएका त्यस्ता परमेश्वरका अगाडि आफ्नो नाशका लागि जान सक्छन् ? जसको तेज अत्यन्त असह्य छ, जसको आँखामा भयङ्कर अग्नि छ। म त तेजस्वरूप भगवान्‌को करोडौं अंशको एक अंशमात्र छु। हे ब्रह्माजी ! जसले एकपटक आँखा झिम्क्याउँदा सम्पूर्ण प्राणीहरूको प्रलय हुन्छ, तपस्यामा संलग्न त्यस्ता शङ्करको नजिकै म जान सक्दिनँ ॥७-९॥

बृहस्पतिले भने – हे महावीर चन्द्रमा ! देवताको हित र अमरावतीको रक्षाको निमित्त तपाईंले हामीमाथि कृपा गर्नुहोस्। तपाईं भगवान् शङ्करको नजिकै गएर आफ्ना शीतल किरणले उहाँको रौद्रस्वरूपलाई शीतल तुल्याएर हाम्रो भय निवारण गर्नुहोस् ॥१०-११॥

---

१. अशक्तोऽसौ कथं देवो ह्यसह्यतेजसात्मकः, इति न.सं.पु.पाठः।
१क. हर्षयन्तः, इति न.सं.पु.पाठः।
२. तपस्थितो देवो वन्द्यतां स यदृच्छया, इति न.सं.पु.पाठः।
३. यस्योन्मेषनिमेषेण, इति न.सं.पु.पाठः।
४. रौद्रतां च, इति न.सं.पु.पाठः।

चन्द्र उवाच

न शक्यते मया तत्र गन्तुं नमोऽस्तु ते गुरो। रुद्रस्यैवाऽन्तिके तीक्ष्णतपःस्थस्य महात्मनः ॥१२॥

क्रोधिनोऽक्रोधिनो वाऽपि को गच्छेत् तस्य चाऽन्तिकम्। विनैवाऽऽज्ञां[५] महेशस्य प्रथमं समुदाहृतम् ॥१३॥

गच्छेत् यदि विनाऽऽज्ञां यस्तस्य नाशः सुनिश्चितः[६]। विन विमर्शं यो[७] भक्तः प्राप्नोति स महापदम् ॥१४॥

इन्द्र उवाच

भो भो दहन तेजस्वी रुद्रांशस्त्वं न संशयः। भद्रं कुरु च देवानां राज्यानां हि विशेषतः ॥१५॥

देहः परोपकाराय धर्म्मरक्षार्थमेव च। सर्वकामदुघश्चाऽऽत्मा क्षणं तिष्ठत्यसंशयः ॥१६॥

अत एवोपक्रियन्ते त्रिलोकास्ते[८] मनीषिभिः। गत्वा रुद्रान्तिकञ्चैषा वार्ता तेन[९] विधीयताम् ॥१७॥

अग्निरुवाच

देवराज महाविज्ञ लोकानुग्रहकारक। यदुक्तं भवता मह्यं तत्सर्वं तथ्यमेव च ॥१८॥

शक्याशक्यं विचार्य्यादौ कार्य्यञ्च कुर्वते बुधाः। अशक्यं शक्र यत्कार्य्यं कुर्वते न हि सज्जनाः ॥१९॥

सृज्यते विश्वमिच्छाभिः पाल्यते च तथाविधम्। संहरन्ति जगत्सर्वं ता एव[१०] सचराचरम् ॥२०॥

यस्य नेत्राग्निना विश्वं क्रियते भस्मसाद् ध्रुवम्। करिष्यति तथा माञ्च न शक्तोऽहञ्च ते नमः ॥२१॥

नारद उवाच

दानशीलः शुचिः साधुः सर्वधर्म्मरतः सदा। परोपकारको देवः सत्यवादी जितेन्द्रियः ॥२२॥

वरुण त्वं समर्थो हि[११] सर्वगुणरसात्मकः। भवान् गच्छतु तोयेश रुद्रस्य चाऽन्तिकं ध्रुवम् ॥२३॥

---

चन्द्रमाले भने – हे बृहस्पति ! हजुरलाई नमस्कार छ। अत्यन्त गहिरो तपस्यामा डुब्नुभएका महात्मा शङ्करको नजिकै म जान सक्दिनँ। क्रुद्ध वा क्रोधमुक्त दुबै अवस्थामा उहाँको आज्ञा नपाईकन त्यहाँ कोही पनि जान सक्दैन। यो पहिले नै भनिसकेको छु। यदि शिवजीको आज्ञाविना उहाँको नजिक कोही गयो भने त्यसको विनाश अवश्य हुन्छ। विचार नगरीकन त्यहाँ जाने त उहाँको भक्तमात्रै हुन्छ ॥१२-१४॥

इन्द्रले भने – हे तेजस्वी अग्नि ! तपाईं रुद्रको अंश हुनुहुन्छ, यसमा शङ्का छैन। देवता र देवताका राज्यको कल्याण होस्, शरीर भनेको अर्काको उपकार र धर्मको रक्षाका निमित्त हो। त्यसैले तीनै लोकका विद्वान्हरू अर्काको उपकार गर्दछन्। हजुर सम्पूर्ण कामना पूर्ण गर्न समर्थ हुनुहुन्छ। त्यसैले शिवजीको नजिकै गएर भएको वृत्तान्त उहाँलाई बताउनुहोस् ॥१५-१७॥

अग्निले भने – हे महाविज्ञ इन्द्र ! हजुरले सम्पूर्ण लोकको हितकारक जुन कुरा भन्नुभयो, त्यो सबै सत्य छ, तर बुद्धिमान् मानिसले पहिले नै काम गर्न सकिन्छ कि सकिँदैन भन्ने कुरा सोचेर मात्र काम गर्नुपर्छ। हे इन्द्र ! जुन कुरा गर्न सकिँदैन, त्यो काम सज्जन मानिसले कहिल्यै पनि गर्दैनन् ॥१८-१९॥

जसको इच्छाले सम्पूर्ण संसारको सृष्टि हुन्छ, पालन हुन्छ र चराचर जगत्को संहार पनि हुन्छ, त्यस्ता भगवान् रुद्रको नेत्रको अग्निले सम्पूर्ण विश्व नै खरानी हुनेछ र म पनि त्यसैगरी खरानी हुनेछु। त्यसैले म यो काम गर्न सक्दिनँ, हजुरलाई नमस्कार छ ॥२०-२१॥

नारदले भने – हे वरुण ! तपाईं दानी, पवित्र, साधु र सबै धर्ममा संलग्न, परोपकारी, जितेन्द्रिय र सत्यवादी हुनुहुन्छ। सम्पूर्ण गुण तथा रसमय हजुर यो कार्य गर्न समर्थ हुनुहुन्छ। त्यसैले हे तोयेश ! हजुर शिवजीको नजिकै जानुहोस् ॥२२-२३॥

---

५. विना चाज्ञाम्, इति न.सं.पु.पाठः।
६. गच्छति चेत्तदाज्ञां यो विनाशं भोस्तदन्तिकम्, इति न.सं.पु.पाठः।
७. अविमर्ष्य तथा, इति न.सं.पु.पाठः।
८. त्रिलोकानाम्, इति न.सं.पु.पाठः।
९. रुद्रान्तिकञ्चैतद्वार्त्तां तस्मै, इति न.सं.पु.पाठः।
१०. निःशेषम्, इति न.सं.पु.पाठः।
११. हि समर्थः, इति न.सं.पु.पाठः।

तवांशैर्जीवनैः पाशिन् प्रशामय च तैजसम्। तीक्ष्णमसह्यमीशस्य गत्वा तदन्तिकं विभो ॥२४॥
कुलीनः शीलसंयुक्तो दानधर्म्मरतः सदा। गच्छ द्रुतं मनोज्ञस्त्वं रुद्रभक्तोऽसि सन्ततम् ॥२५॥

वरुण उवाच

न शक्यं विद्यते ब्रह्मन् मयाऽपि[१२] च तदन्तिकम्। गन्तुं शमयितुञ्चाऽपि[१३] रौद्रतेजस्तपस्विनः ॥२६॥
अशक्तैर्यैः प्रतिश्रुत्य कार्य्यं न क्रियते जनैः[१४]। विडम्बनाय लोकस्य स्याद् द्विज तस्य जीवनम् ॥२७॥
गगनस्थं विधोर्बिम्बं लब्धुमिच्छुर्यथार्भकः। तथाविधा च मे शक्तिस्तद्धासाय भविष्यति ॥२८॥
तस्मान्न कुरुते धीमानशक्यं कार्य्यमात्मना[१५]। उपालम्भैश्च भीतात्मा विवेकस्थो मुनीश्वर ॥२९॥

स्कन्द उवाच

ततो देवाः सशक्राश्च समाकर्ण्य यथोदितम्। चतुर्भिरमरैर्विप्र यत्र धाता ययुर्द्रुतम् ॥३०॥
कातरोक्तञ्च तत्सर्वं सूर्यादीनां दिवौकसाम्[१६]। ब्रह्माणं कथयन्ति स्म चेष्टाञ्चैव घटोद्भव ॥३१॥
लोकेशोऽपि ततो गत्वा वर्णयामास विष्णवे। वृत्तान्तं सर्वरूपाय त्रिकालज्ञाय तत्क्षणम्[१७] ॥३२॥

ब्रह्मोवाच

भवन्ति चाऽत्र तेऽशक्ता गन्तुमपि तदन्तिके। दृष्ट्वा रुद्रौजसं देवा भीष्मग्रस्ताः प्रकम्पिताः ॥३३॥
यत्नस्था अपि निर्यत्ना बभूवुस्ते सुरा विभो। यत्नश्च क्रियतां विष्णो किं विधेयमतः परम् ॥३४॥

विष्णुरुवाच

स्तोत्रञ्च क्रियतेऽस्माभिः सह देवैः पितामह। गत्वा च युगपत्तत्र रुद्रस्यान्ते[१८] महात्मनः ॥३५॥
श्रुत्वा स्तोत्रं महादेवस्ततः प्रशाम्यति ध्रुवम्। स्तोत्रैः शाम्यन्ति लोकेशाः महात्मानस्तथा स्तवैः ॥३६॥
स्तुतिभिर्लभ्यते धर्मः स्तवेनैव फलं भवेत्[१९]। तस्माच्च क्रियते स्तोत्रं यस्माद् भयं विनश्यति ॥३७॥

---

हे वरुण ! तपाईं शिवजीको नजिकै गएर आफ्नो अंशबाट उत्पन्न भएको जलले उहाँको असह्य कडा तेजलाई शान्त गराउनुहोस्। तपाईं कुलीन, शीलसम्पन्न र दानधर्ममा संलग्न तथा नित्य रुद्रभक्त हुनुहुन्छ। त्यसैले तपाईं तुरुन्त जानुहोस् ॥२४-२५॥

वरुणले भने – हे ब्रह्मा ! उग्रतेज भएका तपस्वी रुद्रको तेजलाई शान्त गर्नका लागि म पनि उहाँको नजिक जान सक्दिनँ। जुन व्यक्तिले आफूले नसक्ने काममा हात हाल्छ, त्यस व्यक्तिको जीवन मानिसहरूका सामु हास्यास्पद हुन्छ। कुनै बालकले आकाशमा रहेको चन्द्रमाको बिम्बलाई ग्रहण गर्न खोज्यो भने उसले सक्दैन, त्यस्तै मेरो शक्ति पनि असमर्थ छ। त्यसैले यो काम उपहासपूर्ण हुन्छ। हे धीमन् ! अर्काको उपहासमय भनाइबाट डराएर विवेकी पुरुषले आफ्नो आत्माले नसक्ने काम गर्दैनन् ॥२६-२९॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! त्यसपछि सूर्य, चन्द्र, अग्नि र वरुण गरी चार देवताले भनेको कुरा सुनेर जहाँ ब्रह्मा बस्नुभएको थियो इन्द्र आदि सम्पूर्ण देवता तुरुन्त त्यहाँ गए। उनीहरूले ती देवताहरूको कातर अभिव्यक्ति र क्रियाकलाप सबै ब्रह्मालाई बताए। त्यसपछि ब्रह्माले पनि गएर सबै किसिमको रूप लिन सक्ने भूत, भविष्यत् र वर्तमान कालका वेत्ता विष्णुलाई भएको सबै वृत्तान्त बताउनुभयो ॥३०-३२॥

ब्रह्माजीले भन्नुभयो – हे प्रभो ! रुद्रको तेजलाई देखेर भयभीत भई काम्न थालेका कुनै पनि देवताहरू त्यहाँ जान सकेनन्। प्रयास गर्दागर्दै पनि विफल भए। त्यसैले अब के गर्नुपर्छ, त्यो गर्नुहोस् ॥३३-३४॥

विष्णुले भन्नुभयो – हे ब्रह्माजी ! अब हामी सबै मिलेर शिवजीको नजिक गएर उहाँको स्तुति गरौँ। स्तुति सुनेर महादेव प्रसन्न हुनुहुनेछ किनभने संसारका स्वामीहरू र महात्माहरू स्तुतिबाट नै प्रसन्न हुन्छन्। स्तुतिबाटै धर्म प्राप्त हुन्छ, स्तुतिबाटै फल प्राप्त गर्न सकिन्छ। त्यसैले हामी पनि स्तुति गरौँ, त्यसबाट नै हामीमा रहेको शिवजीप्रतिको सम्पूर्ण भय नाश हुनेछ ॥३५-३७॥

---

१२. ममापि, इति न.सं.पु.पाठः।
१३. प्रशमनायार्य, इति न.सं.पु.पाठः।
१४. अशक्तो यः प्रतिश्रुत्य कार्यं न शक्यते जनः, इति न.सं.पु.पाठः।
१५. धीमन् शक्यं कार्यमनात्मनः, इति न.सं.पु.पाठः।
१६. तेषां दिवौकसां तदा। विधात्रे ..., इति न.सं.पु.पाठः।
१७ साम्प्रतम्, इति न.सं.पु.पाठः।
१८. रुद्रान्तिके महात्मनः, इति न.सं.पु.पाठः।
१९. लभेत, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

इत्याकर्ण्य वचो विष्णोः प्राणस्य सर्वप्राणिनाम्[२०] । ब्रह्मादयः सुरास्सर्वे साधु साध्विति वादिनः ॥३८॥
पूर्वं नेमुरुपेन्द्रं ते परिक्रम्य यथाविधि । आधाय स्वाञ्जलिं मूर्ध्नि स्तुवन्तो हर्षयन्त्रिताः[२१] ॥३९॥
तुष्टुवुश्च ततो रुद्रं ब्रह्मादयः सुरोत्तमाः । किञ्चिद् भयं समाविष्टः शनैर्गत्वा तदन्तिकम् ॥४०॥

देवा ऊचुः

ॐ नमो रुद्राय रौद्राय रौद्ररूपाय ते नमः । रौद्रतेजस्विनेऽजाय रौद्रदेहाय ते नमः ॥४१॥
निर्गुणाय गुणांशाय निर्विकाराय तेजसे । आत्मने पञ्चभूतानां सत्यांशाय नमो नमः ॥४२॥
व्यक्ताव्यक्तस्वरूपाय चैतन्याय च चेतसे । व्योम्ने च[२२] व्योमदेहाय चन्द्रार्क्काग्न्यक्षिणे नमः ॥४३॥
और्वाननाय[२३] देवाय द्यौशीर्षाय नमोऽस्तु ते । भूपदे दिक्षुकर्णाय समुद्रजठराय वै ॥४४॥
भुजङ्गेन प्रतीताय स्वाहङ्कारात्मने नमः । मेघकेशाय भीमाय नमः कमलरेतसे[२४] ॥४५॥
वृक्षरोमशरीराय सुमेरुनाभये नमः । पितामहविसर्गाय सर्वभूताशिने नमः ॥४६॥
सधर्महृच्छरीराय[२५] प्रधानपुरुषाय वै । अद्वितीयाप्रतीताय चाद्याय हेतवे नमः ॥४७॥
ध्यातव्याय सुचिन्त्याय चिन्त्याचित्यात्मने नमः । भूमंस्ते तीक्ष्णतेजोभिर्दग्धानस्मानभिप्लुतान् ॥४८॥
भवान्मायार्णवेऽगाधे संसारेऽपारकेऽवतु । भक्तवत्सल ते दासान् भक्तिहीनान्विभोऽनिशम् ॥४९॥
मायया छादितानस्मानज्ञानस्थान्प्ररक्षतु ।

---

कार्तिक स्वामीले भन्नुभयो – सम्पूर्ण प्राणीका जीवनदाता विष्णुको यो भनाइ सुनेर ब्रह्मा आदि गरेका सबै देवताहरूले ठीक हो ठीक हो भने । उनीहरूले सर्वप्रथम विष्णुको परिक्रमा गरेर शिरमा अँजुली बाँधी स्तुति गर्दै उहाँलाई प्रसन्न तुल्याए । त्यसपछि ब्रह्मा आदि गरेका सबै देवताहरू केही डराउँदै बिस्तारै शिवजीको नजिकै गएर स्तुति गर्न लागे ॥३८–४०॥

देवताहरूले भने – ॐकारात्मा, रुद्ररूप लिने, रौद्रस्वरूप भएका रौद्रलाई नमस्कार छ । प्रचण्ड तेजले युक्त भएका, अजन्मा, रौद्रदेह लिने हजुरलाई नमस्कार छ । निर्गुण भईकन पनि गुणको अंशले युक्त भएका, विकाररहित, तेजोरूप, पञ्चभूतका आत्मा तथा सत्यका अंशलाई बारम्बार नमस्कार छ । व्यक्त र अव्यक्त स्वरूप भएका, चैतन्य तथा चित्तको रूप लिने, वडवानलझैं दीप्त अनुहारले सुहाएका, आकाशस्वरूपका, चन्द्र, सूर्य र अग्नि, यी तीन आँखा भएका ईश्वरलाई नमस्कार छ । पृथ्वीरूप पाउले सुहाएका, दिशाहरू नै कान भएका, समुद्ररूपी पेट भएका, अहङ्काररूपी आत्मा भएका, भुजङ्गको रूपले चिनिनुहुने हजुरलाई नमस्कार छ । मेघ नै केश भएका, कमलरूपी वीर्य भएका, भयानक स्वरूप भएका ईश्वरलाई बारम्बार नमस्कार छ ॥४४–४५॥

वृक्षरूपी रोमयुक्त शरीर भएका, सुमेरुरूपी नाभि भएका, पितामहको विशेष सृष्टिका रूपमा सुहाएका, सम्पूर्ण भूतलाई एकै गास पार्ने संहारकर्ता ईश्वरलाई नमस्कार छ । धर्म तथा प्राणीहरूका हृदयरूपी विग्रह लिएर विराजमान हुनुहुने, मुख्य पुरुष वा प्रकृति र पुरुषका रूपमा भासमान यस्ता अद्वितीय, अप्रतीत र प्रथम कारण भएका ईश्वरलाई नमस्कार छ । हे प्रभो ! हजुरको शरीरबाट भस्म हुन लागेका हामीहरूलाई मायारूपी अगाध र पार पाइनसक्नु दुःखको समुद्रबाट रक्षा गर्नुहोस् । हे भक्तवत्सल प्रभो ! भक्ति नजान्ने हजुरका भक्तहरूलाई रक्षा गर्नुहोस् । हजुरका मायाद्वारा आच्छादित अज्ञानी हामीहरूको रक्षा गर्नुहोस् ॥४८–४९½॥

---

२०. जीवस्य सर्वजीविनः, इति न.सं.पु.पाठः ।
२१. स्तोत्रयन्तश्च हर्षिताः, इति न.सं.पु.पाठः ।
२२. व्योमाय, इति न.सं.पु.पाठः ।
२३. और्वमुखाय, इति न.सं.पु.पाठः ।
२३. कमलरेतसे नमः, इति न.सं.पु.पाठः ।
२४. हृद्धर्मो यस्य देहाय, इति न.सं.पु.पाठः ।

स्कन्द उवाच

ततः स्तवं समाकर्ण्य सर्वदेवमुखाच्च्युतम् ॥५०॥

तुतोष स्तवनै[२५]र्दिव्यैराशुतोषश्च भक्तिभिः[२६]। उवाच शङ्करस्तेभ्यो हर्षगद्गदया गिरा ॥५१॥

आत्मतेजांसि संहृत्य प्रसन्नवदनोऽभवत्।

ईशान उवाच

भो देवा ऋषयो भक्ता यूयञ्चात्र मदन्तिके ॥५२॥

आगताश्च कृतं स्तोत्रं युष्माभिर्मे मुदे[२७] भृशम्। अतः सन्तोषवान्[२८] वत्सा भवानि स्तुतिभिश्च वः ॥५३॥

किं करोमि च युष्माकं कार्यं वदत[२९] मेऽधुना।

देवा ऊचुः

सर्वो दत्तो वरोऽस्मभ्यं न किञ्चिदत्र शिष्यते ॥५४॥

अभूम देवताः सर्वे भवत्प्रसादतो वयम्। भवन्तञ्च विना स्वर्गे न शक्ताः स्थातुमीश्वर ॥५५॥

ज्ञात्वा चैतद्रहस्यं यत्त्वया हीनं[३०] सुरालयम्। आक्रमिष्यन्ति दैतेया अतो भीता इहागताः ॥५६॥

भवन्तमभिषिञ्चामो वयमतोऽद्य सादरम्[३१]।

स्कन्द उवाच

निर्मलैः[३२] तीर्थकीलालैर्हिरण्यकलशोद्धृतैः ॥५७॥

ददौ विष्णुर्मुदा विप्र चाभिषेकं परात्मने। ददौ ब्रह्मा पठन् वेदानभिषेकं मुदा पुनः ॥५८॥

ददौ सूर्य्यो महातेजास्तेजसैरुज्ज्वलैर्जलैः[३३]। ददौ चन्द्रोऽमृतमयैः[३४] कलशैरोषधीयुतैः ॥५९॥

ददौ शक्रोऽभिषेकञ्च रत्नकुम्भोद्धृतोदकैः[३५]। ददौ वह्निर्महेशाय तेजःपूर्णघटोदकैः ॥६०॥

---

कार्तिक स्वामीले भन्नुभयो – सम्पूर्ण देवताको मुखबाट निस्किएको स्तुति सुनेर दिव्य दिव्य स्तुतिका शक्तिले गर्दा भगवान् शङ्कर प्रसन्न हुनुभयो। आफ्नो तेजलाई आफैँमा विलीन गराएर खुसीले गद्गद हुँदै उहाँले भन्नुभयो ॥५०–५१½॥

ईशानले भन्नुभयो – हे देवता हो ! हे ऋषि हो ! तपाईंहरू मेरा भक्त हुनुहुन्छ, मेरो समीपमै आएर तपाईंहरूले हृदयदेखि नै मेरो स्तुति गर्नुभयो, तपाईंहरूको स्तुतिबाट म प्रसन्न भएँ। मैले अहिले के काम गर्नुपर्‍यो ? भन्नुहोस् ॥५२–५३½॥

देवताहरूले भने – हजुरले सबै हामीलाई कुरा दिनुभएको छ, केही बाँकी छैन। हजुरको कृपाले हामी देवता भयौँ। हे ईश्वर ! हजुरविना हामी स्वर्गमा बस्न सक्दैनौँ किनभने त्यहाँ हजुर हुनुहुन्न भन्ने कुरा थाहा पाएर दैत्यहरूले स्वर्गमा आक्रमण गर्दैछन्। त्यसैले डराएर हामी यहाँ आएका छौँ। तसर्थ हामी हजुरलाई आजै अभिषेक गर्न चाहन्छौँ ॥५४–५६½॥

कार्तिक स्वामीले भन्नुभयो – त्यसपछि विष्णुले प्रसन्न भएर सुनको कलशबाट निकालिएका तीर्थको जलले ईशानको अभिषेक गर्नुभयो। ब्रह्माले वेदहरू पढ्दै बारम्बार उहाँको अभिषेक गर्नुभयो। यसैगरी तेजस्वी सूर्यले आफ्नो उज्वल तेजद्वारा र चन्द्रमाले औषधिले युक्त भएका अमृतले पूर्ण कलशद्वारा ईशानको अभिषेक गरे। त्यसपछि इन्द्रले रत्नको घडाबाट निकालिएको जलले तथा अग्निले तेजले भरिएको घडाबाट जल निकालेर महेश्वरलाई अभिषेक दिए। ५७–६०॥

---

२५. स्तुतिभिः, इति न.सं.पु.पाठः।
२६. शक्तिभिः, इति न.सं.पु.पाठः।
२७. आगत्य च कृतं स्तोत्रं यथार्थं मे मुदा, इति न.सं.पु.पाठः।
२८. संतुष्टवान्, इति न.सं.पु.पाठः।
२९. वदन्तु, इति न.सं.पु.पाठः।
३०. ते विरहितम्, इति न.सं.पु.पाठः।
३१. अतो वयं भवन्तं हि स्वभिषिच्याम अद्य वै, इति न.सं.पु.पाठः।
३२. आनीय, इति न.सं.पु.पाठः।
३३. तेजोज्ज्वलैश्च तेजसे, इति न.सं.पु.पाठः।
३४. अमृताद्ययैर्वै, इति न.सं.पु.पाठः।

ददौ पाशी पुनस्तस्मै सर्वतीर्थजलैस्तथा। ददौ वायुः पुनस्तस्मै सुगन्धशीतलैर्जलैः ॥६१॥
सप्तर्षयो ददुः स्नानं गायत्रीस्मरणादृतैः। नारदोऽपि ददौ तस्मै जयशब्दं पठन्मुदा ॥६२॥
सिद्धा मन्त्राञ्जपन्तोऽदुरभिषेकं पवित्रकैः[३५क]। कामधेनुर्ददौ स्नानं दुग्धप्रस्रवणैः[३६] शुभैः ॥६३॥
देवाश्च प्रददुस्तस्मै गन्धर्वाश्च तथापरे[३७]। ततो गन्धैः समं पुष्पैर्दिव्यवासोभिरीश्वरम् ॥६४॥
पूजयामास तन्मन्त्रान् जपन् गुरुर्मुदा विभुम्। ततो ववर्ष पुष्पाणां लाजानां संहतिर्भृशम् ॥६५॥
दिवो देवाङ्गनादोर्भिः प्रक्षिप्ता दिवि सम्भवाः। उद्भूतो जयशब्दश्च नेदुर्दुन्दुभयो भृशम् ॥६६॥
जगुर्दिव्यस्त्रियस्तत्र रुद्रयशस्तदात्मना। ननृतुश्चाप्सरास्तत्र मृदङ्गतालनिस्वनैः ॥६७॥
ततो विष्णुरुवाचेशं सर्वलोकहिताय च।

विष्णुरुवाच

भूतेश मेरुशृङ्गे च त्वं पूर्वोत्तरयोर्दिशोः[३८] ॥६८॥
मध्ये तिष्ठ ततो लोकान् तत्रस्थान् रक्षयानिशम्। अद्य प्रभृति सर्वज्ञ दिक्पालो भव सर्वदा ॥६९॥
ततो लोका वदिष्यन्ति त्वामीशानं निरन्तरम्[३९]।

स्कन्द उवाच

ॐ प्रतिश्रुत्य तस्मै स ययौ यत्र च विष्णुना। उपरिष्टाद्[४०] दिशोर्मध्ये जगत्संरक्षणाय वै ॥७०॥
अद्यापि स जगत्सर्वं रक्षन्नास्ते सुखं हरः[४१]। तस्माद्विश्वं द्विजेशानं वदन्ति प्राणिनोऽनिशम् ॥७१॥
तदादिपालाश्च दिशां बभूवुः[४२] ध्रुवोऽपि चक्रे हि तपः कठोरम्।
विष्णुश्च धाता नरनामदान्तो भगीरथो राट् प्रसभं तदात्मा ॥७२॥
इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे ईशानाभिषेको नामैकविंशतितमोऽध्यायः ॥२१॥

---

यस्तै वरुणले सम्पूर्ण तीर्थको जलले र वायुले सुगन्ध र शीतल जलले भगवान्को अभिषेक गरे। सप्तऋषिहरूले गायत्री सम्झिएर उहाँलाई स्नान गराए भने नारदले जय शब्द उच्चारण गरेर अभिषेक गरे। सिद्धहरूले पवित्र मन्त्रहरूको उच्चारण गरेर, कामधेनुले दूधको धाराले स्नान गराई भगवान्को अभिषेक गरिन्। देवता, गन्धर्व आदिले चन्दन, फूल, दिव्य वासनामय पदार्थहरूले ईश्वरलाई अभिषेक दिए ॥६०-६४॥

बृहस्पतिले शिवजीका विभिन्न मन्त्रहरू जप्दै प्रसन्नताका साथ ईश्वरको पूजा गरे। आकाशबाट देवाङ्गनाहरूले छरेका फूल र लाजा वर्सिए, जय-जयकार भयो, दमाहाहरू जोडसित बजे, स्वर्गीय स्त्रीहरूले रुद्रको कीर्ति गाए, अप्सराहरू मादलको ताल र सुरमा नाँच्न थाले। त्यसपछि विष्णुले सम्पूर्ण लोकको हितका निमित्त ईशानलाई भन्नुभयो ॥६५-६७॥

विष्णुले भन्नुभयो - हे प्राणीहरूका अधिपति! आजदेखि हजुर सुमेरु पर्वतको पूर्वोत्तर दिशा अर्थात् ईशानकोणमा गएर बस्नुहोस् र त्यहाँ भएका प्राणीहरूलाई सधैं रक्षा गर्नुहोस्, अब हजुर सधैंका लागि त्यस दिशाको पालक हुनुभयो र यसैले लोकले हजुरलाई निरन्तर ईशान भनी सम्बोधन गर्नेछन् ॥६८-६९॥

कार्तिक स्वामीले भन्नुभयो - विष्णुले यति भनेपछि हुन्छ भनेर महेश्वर सम्पूर्ण जगत्को रक्षाका लागि जानुभयो। आज पनि त्यहाँ बसेर ईशानले सबै प्राणीहरूको आनन्दसित रक्षा गरिरहनुभएको हुनाले लोकले उहाँलाई सधैं ईशान भन्ने गर्दछ ॥७०-७१॥

त्यसै समयदेखि माथि बताइएका देवताहरू दिक्पाल भए। ध्रुवले पनि भगवान् शिवजीको कठिन तपस्या गरे। विष्णु, ब्रह्मा र ईश्वरका अंश भएका भगीरथ राजाले पनि त्यहाँ गएर तपस्या गरेका थिए ॥७२॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गत हिमवत्खण्डको ईशानका अधिपतिका रूपमा ईश्वरको अभिषेकनामक एक्काइसौं अध्याय पूर्ण भयो।

---

३५. रत्नघटेद्धृतोदकैः, इति न.सं.पु.पाठः।
३५क. मन्त्राञ्जपन्तोऽदुः सिद्धा अभिषेकं पवित्रकैः, इति न.सं.पु.पाठः।
३६. दुग्धैः प्रस्रणैः, इति न.सं.पु.पाठः।
३७. तथा पराः, इति न.सं.पु.पाठः।
३८. दिशः, इति न.सं.पु.पाठः।
३९. चेशानञ्च, इति न.सं.पु.पाठः।
४०. उपरिष्टम्, इति न.सं.पु.पाठः।
४१. रक्षति स्म, इति न.सं.पु.पाठः। ४२. भवेयुः, इति न.सं.पु.पाठः।

# द्वाविंशतितमोऽध्यायः

## ध्रुवलोकस्याधिपतित्वेन ध्रुवस्याभिषेकः

अगस्त्य उवाच

कोऽसौ ध्रुवो महावीरः सर्वोन्नतमनोरथः। तपस्तेपे कथं स्कन्द मानुषो वा सुरोऽपि वा ॥१॥

कस्मिन्स्थाने च तीर्थे स केनोपदेशितो विभो। श्रोतुमिच्छाम्यहञ्चैतद्वद मे शङ्करात्मज ॥२॥

स्कन्द उवाच

आसीदुत्तानपादो हि सर्ववर्णप्रवन्दनः। तस्य पुत्रो महाबाहुर्ध्रुवो नाम च विश्रुतः ॥३॥

पित्रा चोत्तानपादेन भ्रातरमुत्तमं[1] प्रियम्। अङ्के चारोपितं दृष्ट्वा[2] ध्रुवः सदसि संस्थितम् ॥४॥

उदासीनोऽभवत्तत्र मातुर्गत्वाऽन्तिकं ध्रुवः। स्वानादरञ्च तद्वार्तां तदा मात्रे न्यवेदयत् ॥५॥

ततः पप्रच्छ तद्वार्तां मातरं प्रति तद्वचः। उदासीनमना भूत्वा स्मृत्वा[3] स्वानादरं मुहुः ॥६॥

ध्रुव उवाच

आरोप्य भ्रातरं स्वाङ्के सभामध्ये पिता स्थितः। पश्यन्तमपि[4] मां त्यक्त्वा हर्षात् तेन समं बभौ ॥७॥

मातः कथं भवेद् भ्राता मम पितुः प्रियो वद। न करोति मयि स्नेहं कथं स धर्मवित् पिता[5] ॥८॥

स्कन्द उवाच

वचो निशम्य तन्माताऽपमानितस्य तस्य सा[6]। पुत्रस्य सान्त्वयामास सुवचना तदात्मजम् ॥९॥

---

## अध्याय- २२

### ध्रुवलोकको अधिपतिका रूपमा ध्रुवको अभिषेक

अगस्त्य मुनिले भन्नुभयो – हे कार्तिक स्वामी। सबैभन्दा बढी महत्वाकाङ्क्षा राख्ने महावीर ध्रुव भनेको को हुन् ? ती देवता हुन् कि मानव हुन् ? उनले कुन ठाउँमा, कुन तीर्थमा, कसको उपदेश अनुसार कसरी तपस्या गरे? यो कुरा म सुन्न चाहन्छु, मलाई बताउनुहोस् ॥१-२॥

कार्तिक स्वामीले भन्नुभयो – कुनै समयमा ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र सबैका वन्दनीय उत्तानपाद नाम गरेका राजा थिए। तिनका लामा लामा हात भएका ध्रुव नामका पुत्र थिए। ध्रुव सौतेनी आमाको छोरो प्यारो भाइ उत्तमलाई काखमा राखेर सभामा बसिरहेका उत्तानपादलाई देखेर ज्यादै चिन्तित भए। अनि आमाका नजिकै गएर आफूलाई बाबुले गरेको अनादरका विषयमा निवेदन गरे। त्यसपछि उदासीन भएर ध्रुवले पहिले भएको अनादरलाई बारम्बार सम्झिँदै आमासित त्यसको कारण सोधे ॥३-६॥

ध्रुवले भने – हे आमा। भाइलाई आफ्नो काखमा राखेर सभामा बुबा बस्नुभएको छ, उहाँ मलाई हेर्दा पनि हेर्नुहुन्न, उसित आनन्दमग्न हुनुभएको छ। कसरी भाइ मेरो बुबाको प्यारो बन्यो ? धर्मज्ञ भएर पनि बुबाले कहिल्यै पनि किन मलाई स्नेह गर्नुभएन ? बताउनुहोस् ॥७-८॥

कार्तिक स्वामीले भन्नुभयो – पिताको व्यवहारबाट अपमानित बनेका ध्रुवको भनाइ सुनेर उनकी आमाले मीठो बोलीले उनलाई सान्त्वना दिँदै भनेकी थिइन् ॥९॥

---

१. भ्रातरं पूर्वजम्, इति न.सं.पु.पाठः।
२. चारोप्य दृष्ट्वा तम्, इति न.सं.पु.पाठः।
३. स्मृत्य, इति न.सं.पु.पाठः।
४. पश्यन्नपि च, इति न.सं.पु.पाठः।
५. पिता कदापि धर्मवित्, इति न.सं.पु.पाठः।
६. आवमानात्मकस्य वै, इति न.सं.पु.पाठः।

सुनीतिरुवाच

पुत्र मा कुरु चिन्तां[७] त्वं पूर्वजन्मनि यत्कृतम्। दुःखं वा च सुखं वत्स सर्वं तदिह लभ्यते ॥१०॥
दैवात्प्राप्नोति तत्सर्वं नृपाङ्गं विप्रविग्रहम्। नरदेहं च देवाङ्गञ्चतुर्विधं कलेवरम् ॥११॥
प्राग्जन्मनि कृतं कर्म तद्दैवं हि न संशयः। ज्ञात्वाऽऽत्मनेह चित्तेन धीरस्तत्र न मुह्यति ॥१२॥
तस्मादपि तपो मूलं तपस्तत्त्वं महद् भुवि[८]। तपसा लभ्यते सर्वं यद्यद्वाञ्छति तत्क्षणात् ॥१३॥

स्कन्द उवाच

श्रुत्वा मातुर्वचो विप्र तपोनिष्ठो बभूव सः। अनादृतोऽपि पित्राशु हर्षपुञ्ज[९]समायुतः ॥१४॥
तत औत्तानपादिर्वै तपः कर्तुं मुने[१०] ययौ। क्षुत्पिपासां परित्यज्य चैकाकी निर्ज्जनं वनम्[११] ॥१५॥
तत्र वृक्षघनेऽरण्ये सिंहव्याघ्रैश्च सेविते। ध्रुवो ददर्श सप्तर्षीन्सर्वसत्त्वनिषेविते ॥१६॥
नमश्चकार[१२] तान् विप्रान्कृताञ्जलिपुटो ध्रुवः। कृत्वा प्रदक्षिणं सम्यक्स्तुतिभिश्च पुनः पुनः ॥१७॥

सप्तर्षय ऊचुः

कस्त्वं बालक गूढात्मा[१३] नूनमिहागतो वने। अगम्ये मानुषाणां च नानाजन्तुनिषेविते ॥१८॥
भयं किं नास्ति ते[१४] किञ्चिदात्मनः कोमलार्भक। व्याघ्राद् हरेश्च गोपाय्य देहं त्वं कथमागतः[१५] ॥१९॥

ध्रुव उवाच

नाऽहं भीतो[१६] द्विजश्रेष्ठा व्याघ्रैः सिंहैश्च जन्तुभिः। यदृच्छयाऽऽगतश्चाऽत्र पितृपरिभवादहम् ॥२०॥
विभोरुत्तानपादस्य पुत्रोऽहञ्च प्रजापतेः। इहागत उदासीनो ध्रुवो नामेति विश्रुतः ॥२१॥

---

सुनीतिले भनिन्– हे बाबु ! तिमी दुःख नमान। पूर्वजन्ममा जस्तो कर्म गरिएको छ, त्यसै अनुसार यस लोकमा दुःख वा सुख प्राप्त हुन्छ। राजा, ब्राह्मण, मानिस र देवता, यी चार रूपमा जन्म लिन भाग्यले मात्र पाइन्छ। पूर्वजन्ममा जुन कर्म गरिएको हुन्छ त्यो नै दैव हो, यसमा शङ्का छैन। यो कुरा बुझेर बुद्धिमान् मानिस त्यसमा मोहित हुँदैन। त्यसमा पनि यी सबैको मूल तपस्या नै हो र त्यो तपस्या सबैभन्दा ठूलो पनि हुन्छ, तपस्याले जे चितायो त्यही वस्तु तत्काल प्राप्त गर्न सकिन्छ ॥१०–१३॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! आमाको यस्तो वचन सुनेर ध्रुवको मनमा तपस्याप्रति निष्ठा जागेर आयो र बाबुले गरेको अनादर पनि हर्षका रूपमा परिणत भयो। हे अगस्त्य मुनि ! त्यसपछि उत्तानपादका छोरा ध्रुव भोक र प्यासको वास्तै नगरी एक्लै तपस्या गर्न जङ्गलतिर लागे। घना रुख भएको र सिंह, बाघ आदि सम्पूर्ण प्राणीहरूले भरिएको त्यस जङ्गलमा ध्रुवले सप्तऋषिहरूलाई देखे। अनि उनले अँजुली बाँधेर सप्तर्षिहरूको प्रदक्षिणा गरी स्तुति गर्दै ससम्मान बारम्बार उनीहरूलाई नमन गरे ॥१४–१७॥

सप्तर्षिहरूले भने – निर्भीक हे बालक ! विभिन्न जन्तुहरूले भरिएको, हम्मेसी मानिस आउन नसक्ने यस जङ्गलमा तिमी कसरी आयौ ? हे सुकोमल बालक ! तिमीलाई के बाघ र सिंहदेखि डर लाग्दैन ? तिनीहरूलाई पनि छलेर तिमी कसरी आयौ ? हामीलाई बताऊ ॥१८–१९॥

ध्रुवले भने – हे द्विजश्रेष्ठ ! बाघ, सिंह आदि जन्तुले लखेटेर म आएको होइन। पिताको अपमानले गर्दा आफूखुसी नै म यहाँ आएको हुँ। म शक्तिशाली प्रजापति उत्तानपादको छोरो हुँ, मलाई ध्रुव भन्दछन्। म खिन्न भएर यहाँ आएको छु ॥२०–२१॥

---

७. दुःखम्, इति न.सं.पु.पाठः।
८. तप एव गरीयसम्, इति न.सं.पु.पाठः।
९. पितुरनादरोऽप्याशु हर्षपूर्ण, इति न.सं.पु.पाठः।
१०. वनम्, इति न.सं.पु.पाठः।
११. मुने, इति न.सं.पु.पाठः।
१२. वन्दयामास, इति न.सं.पु.पाठः।
१३. गाढात्मा, इति न.सं.पु.पाठः।
१४. भयं न विद्यते, इति न.सं.पु.पाठः।
१५. व्याघ्रेण हरिणा द्रुत्य बाल कथं त्वमागतः, इति न.सं.पु.पाठः।
१६. द्रुतो, इति न.सं.पु.पाठः।

मां त्यक्त्वा पूर्वजं क्रोडे निधाय भ्रातरं पिता[१७]। सभामध्ये स्थितो हर्षात् तस्माद्वैराग्यवानहम् ॥२२॥
अतः समागतस्तप्तुं तपः कठोरमिच्छया। जीवितुमिह नेच्छामि सत्यमेतन्महर्षयः ॥२३॥
भगवत्पादुकाम्भोजनिषेवणाय मे मनः। भवतामनुकम्पा चेदुपदेशः प्रदीयताम् ॥२४॥
क्षणं तिष्ठति कायोऽयं सुखदुःखसमाकुलः। यस्मात्संलभ्यते मोक्षो दुःखार्णवप्रणाशकः ॥२५॥

सप्तर्षय ऊचुः

अहोऽद्भुतं महज्जातं[१८] बालकस्याऽस्य चेष्टितम्। यस्येदृशी महाबुद्धिस्तस्य किं दुर्लभं भवेत् ॥२६॥
वत्साऽतिबालकोऽसि त्वं तपः कर्त्तुं समुद्यतः। शक्तश्चेद्धि तपस्तप्तुमग्निमध्ये यथा तनुः[१९] ॥२७॥
हिमालये महाशृङ्गे सर्वोन्नते सुशेखरे। एकचित्तं समाधाय रुद्रमन्त्रः प्रजप्यताम् ॥२८॥
कामतीर्थे महापूते बहुतीर्थोत्तमोत्तमे। स्नात्वाऽऽदौ विधिवच्छृङ्गे[२०] सर्वोन्नते च गम्यताम् ॥२९॥

स्कन्द उवाच

वचो निशम्य मुनीनामृषिभिरुपदेशितः। ययौ ध्रुवो महायोगी हिमालये नगोत्तमे ॥३०॥
तपः कर्त्तुं मुदा युक्तः परित्यज्य प्रियाप्रियम्। मोहकञ्चुकनिर्मुक्तो ज्ञानकञ्चुकसंवृतः ॥३१॥
हिमवदाग्नेयाशायां शोभितायां सुकन्दरैः[२१]। ब्रह्मपुत्रनदश्रेष्ठः कामधारा नदी वरा ॥३२॥
तयोश्च सङ्गमे धीर कामतीर्थमुदाहृतम्। तत्र स्नात्वा दिवं यान्ति पातकैरपि वर्जिताः ॥३३॥
तस्मिँस्तीर्थे महापुण्ये वरदे ब्रह्मणोदिते। सप्तजन्मकृतं पापं स्नानात्क्षणात्प्रणश्यति ॥३४॥
तत्र सस्नौ ध्रुवः सम्यक् कामतीर्थे स्वकामदे। भस्मना लेपयन् गात्रं रुद्राक्षाँश्च दधार वै ॥३५॥

---

पहिले जन्मिएको जेठो पुत्र मलाई काखमा नलिई मेरो भाइलाई मात्र काखमा राखेर मेरा बुबा सभामा आनन्दसित बस्नुभएको हुनाले म विरक्त भएँ। हे महर्षिहरू हो ! त्यसैले म कठोर तपस्या गर्ने इच्छा लिएर यहाँ आएको छु, मलाई अपमान सहेर साँच्चिकै बाँच्ने इच्छा छैन। मलाई भगवान्‌को चरणकमलको सेवा गर्ने मन छ। सुख र दुःखले युक्त भएको यो शरीर क्षणिक छ। ममाथि हजुरहरूको कृपा हुन्छ भने दुःखरूपी समुद्रको नाश जसबाट हुन्छ, त्यस्तो मोक्ष प्राप्त गर्ने उपदेश दिनुहोस् ॥२४-२५॥

सप्तर्षिहरूले भने – यस बालकको विचार त अत्यन्त आश्चर्यजक रहेछ। जसको यस्तो श्रेष्ठ बुद्धि छ, त्यसका लागि दुर्लभ वस्तु के पो होला र।। हे बाबु ! तपस्या गर्न त खोजेका छौ, तर तिमी अत्यन्त सानो बालक छौ। तपस्या गर्नु भनेको आगोभित्र शरीर राख्नुजस्तै हो, सक्छौ भने गर। हे बाबु ! सबै तीर्थमध्ये उत्तम तीर्थ भएको, अत्यन्त पवित्र कामतीर्थमा पहिले विधिपूर्वक स्नान गरेर हिमालयको सबैभन्दा अग्लो सुन्दर शिखरमा जाऊ र त्यहाँ एकचित्त भई भगवान् रुद्रको मन्त्र जप ॥२६-२९॥

कार्तिक स्वामीले भन्नुभयो – सप्तर्षिहरूको भनाइ सुनेर उनीहरूकै उपदेश अनुसार महायोगी ध्रुव मोहको भोटो फाली ज्ञानको भोटो भिरेर खुसी हुँदै प्रिय र अप्रिय भन्ने भेदभावलाई त्यागी तपस्या गर्न पर्वतश्रेष्ठ हिमालयमा गए। हे धीर ! हिमालयको आग्नेयपट्टिको भागमा अत्यन्त सुन्दर गुफाबाट ब्रह्मपुत्र नाम गरेको श्रेष्ठ नद बगेको छ। त्यसै ठाउँमा कामधारा नाम गरेकी अर्की उत्तम नदी पनि छन्। ती दुईको सङ्गमस्थलमा कामतीर्थ भन्ने तीर्थ रहेको छ। त्यहाँ स्नान गर्नाले प्राणीहरू सम्पूर्ण पापबाट मुक्त भएर स्वर्ग जान्छन्। अत्यन्त पवित्र एवं अभीष्ट वरदायक त्यस तीर्थमा स्नान गर्नाले सात जन्मसम्म गरेको पाप तुरुन्तै नाश हुन्छ भनेर ब्रह्माले भन्नुभएको छ। ध्रुवले आफ्नो इच्छापूर्ति गर्ने त्यस कामतीर्थमा विधिपूर्वक स्नान गरे। त्यसपछि शरीरभरि विभूति लगाएर रुद्राक्ष धारण गरे ॥३०-३५॥

---

१७. च पिता मम, इति न.सं.पु.पाठः। १८. महानत्र, इति न.सं.पु.पाठः। १९. तनः, इति न.सं.पु.पाठः।
२०. विधिवद्वत्स, इति न.सं.पु.पाठः। २१. कन्दरैर्बहुशोभने, इति न.सं.पु.पाठः।

ततो ययौ ध्रुवो नूनं सर्वोन्नतशिलोच्चयम्। अगम्यं सर्वसत्त्वानां बहुतुषारभूषितम्॥३६॥
ऋजुकायः समासीनस्तत्र कूटे सुनिश्चलः। मर्त्यवर्षसहस्राणि निश्चलः सन् जजाप सः॥३७॥
तुष्टाव च महेशानं रुद्रं नामपदैर्मुनि। लोमाञ्चनो महात्माऽसौ भावाढ्यो गद्गदोदितैः॥३८॥

ध्रुव उवाच

ॐ नमः शिवाय भव्याय भद्ररूपाय तेजसे। तेजसां पुञ्जरूपाय[२२] ज्योतिषां पतये नमः॥३९॥
संसारदाय देवाय साररूपाय शूलिने। निरञ्जनाय रुद्राय भूतेशाय नमो नमः॥४०॥
व्योमदेहाय चाऽऽद्याय ह्यनाद्याय कपर्दिने। भूतकृत्ताय रुद्राय शङ्कराय नमो नमः॥४१॥
त्वग्रूप[२३]स्पर्शरूपाय रक्तांशाय नमो नमः। मांसरूपाय जीवाय मेदोरूपाय वै नमः॥४२॥
स्नायुषे चाऽस्थिरूपाय त्रिनाडीरूपिणे नमः। घ्राणस्थाय च गन्धाय रसज्ञाय रसाय च॥४३॥
चाक्षुषाय च नेत्राय श्रोत्राय श्रुतये नमः। प्राणिनां[२४] जीवरूपाय जीवसंज्ञात्मने नमः॥४४॥
पृथ्वीरूपाय भीमाय पानीयमूर्त्तये नमः। तेजोरूपाय चोग्राय समीरमूर्त्तये नमः॥४५॥
अन्तःस्थाय च देवाय बुद्धिरूपाय ते नमः। मनोरूपाय चित्ताय मानरूपाय वै नमः॥४६॥
चैतन्याय विवेकाय ज्ञानरूपाय शम्भवे। शक्तिरूपाय भर्गाय कर्त्रे च जगतां नमः॥४७॥
त्राहि मां देव भूतेश संसारदुःखसागरात्। अज्ञानातितमोनिम्नकूपान्तःपतितं विभो॥४८॥

---

त्यसपछि ध्रुव सबै प्राणीहरू पुग्न नसक्ने, हिउँ नै हिउँले सुशोभित हिमालयको सबैभन्दा अग्लो शिखरमा गए। सोझो शरीर बनाई स्थिर भएर त्यस शिखरमा बसेका ध्रुवले मानिसको एक हजार वर्षको अवधिसम्म निश्चल भएर जप गरे। महात्मा ध्रुवले रोमाञ्चित हुँदै भावपूर्ण गद्गद अभिव्यक्तिद्वारा भगवान्का नामहरू जपेर महेश्वर रुद्रको स्तुति गरे॥३६-३८॥

ध्रुवले भने – भद्ररूप लिने कल्याणकारी मङ्गलस्वरूप शिवलाई नमस्कार छ, तेजको पुञ्जमय शरीर भएका तेजका मालिकलाई नमस्कार छ। संसारको दुःखलाई नाश गर्ने अथवा संसारको सृष्टि गर्ने, साररूप भएका, त्रिशूल धारण गर्ने, क्लेशरहित, भूतपति रुद्रदेवलाई बारम्बार नमस्कार छ। आकाशरूपी शरीर लिने, आदि तथा अनादि स्वरूप भएका, जटाजूट धारण गर्ने, प्राणीका संहारकर्ता रुद्रस्वरूप शङ्कर भगवान्लाई बारम्बार नमस्कार छ। छालामा स्पर्शका रूपमा रहनुहुने, नाडीमा रगतका रूपमा रहनुहुने, मासु, बोसो जीवका रूपमा रहनुहुने, रुद्रदेवालाई नमस्कार गर्दछु। नसा, हड्डी एवं ईडा, पिङ्गला र सुषुम्णा गरी तीन नाडीका रूपमा रहनुहुने, प्राणमा रहनुहुने, घ्राणेन्द्रिय र गन्धका रूपमा रहनुहुने, जिब्रो एवं रसका रूपमा रहनुहुने, चक्षु र रूप बनेर रहनुभएका,श्रोत्र र शब्दरूपका जीवका रूपमा रहेर पनि सम्पूर्ण जीवलाई जीवन दिने भगवान् शङ्करलाई बारम्बार नमस्कार छ॥३९-४२॥

नाकका रूपमा गन्धको, जिब्राका रूपमा रसको, आँखाका रूपमा दृष्टिको र कानका रूपमा शब्दको ग्रहण गर्ने, प्राणीहरूको जीवस्वरूप जीवात्मा परमेश्वरलाई नमस्कार छ। पृथ्वी, आकाश, जल, तेज र वायु– यी पञ्चतत्वको रूपमा रहेका भगवान् शिवलाई नमस्कार छ। शरीरभित्र बुद्धिका रूपले रहनुहुने र मन, चित्त तथा अभिमानस्वरूप हजुरलाई बारम्बार नमस्कार छ।चैतन्य, विवेक, ज्ञान, शक्ति र तेजोरूप भएका संसारका सृष्टिकर्ता शम्भुलाई नमस्कार छ। हे भगवान् ! हे भूतेश ! अज्ञानरूपी अन्धकारको गहिरो कुवाभित्र निमग्न मलाई संसाररूपी दुःखको समुद्रबाट उद्धार गर्नुहोस्॥४३-४८॥

---

२२. देहाय, इति न.सं.पु.पाठः।
२३. त्वगेव, इति न.सं.पु.पाठः।
२४. जीविनाम्, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

इत्याकर्ण्य स्तुतिं देवो ध्रुवस्य भक्तितो मुने। तुतोषाऽतितरां रुद्रः स्तुतिभक्तितपोवरैः ॥४९॥

ततो जपावसाने च ह्याविर्भूतो महाविभुः। हृष्यमाणो हितं प्रेक्ष्य प्रोवाच वचनं मुने ॥५०॥

ईश्वर उवाच

अहोऽद्भुतं तपस्तप्तं कठोरं बालक त्वया। द्वन्द्वभावं परित्यज्य सर्वभोग्यविवर्जितः ॥५१॥

ईदृशो बालकः शृङ्गे समाराधितवान् ध्रुवः। भूत्वा त्वं निश्चलो वत्स निर्ज्जने ब्रह्मशेखरे ॥५२॥

तस्माद्वरमिदानीं ते ददामि ध्रुव निश्चलम्। आकर्णय ध्रुवं मत्त एकचित्तो वरं मम[२५] ॥५३॥

यस्मात्पितुरवज्ञानादिहागत्य तपः कृतम्। तस्मात्सर्वोपरि श्रीमान् भव त्वं मे प्रसादतः ॥५४॥

अद्यप्रभृति बालस्त्वं सर्वलोकोपरि प्लुते। मेरुकूटे महास्थाने तत्र तिष्ठ सुनिश्चलः ॥५५॥

ततो लोके[२६] वदिष्यन्ति ध्रुवलोकमिति जनाः[२७]। सर्वलोकाश्चलन्त्याऽशु ध्रुवलोकोऽचलो भवेत्[२८] ॥५६॥

स्कन्द उवाच

इति दत्त्वा वरं रुद्रश्चाऽन्तर्द्धानं ययौ तदा। तस्मै ब्रह्मा समागत्य चाऽभिषेकं ददौ मुदा ॥५७॥

ततो ध्रुवं समानीय कामगेन रथेन तम्। गीतवाद्यमहोल्लासाप्सरोगणयुतो विधिः ॥५८॥

सर्वोपरि महाकूटे सुमेरोः सुरसद्मनि। ब्रह्मा तं स्थापयामास ध्रुवं सर्वोन्नते पदे[२९] ॥५९॥

---

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! ध्रुवले भक्तिपूर्वक गरेको यो स्तुति सुनेर भगवान् रुद्र अत्यन्त प्रसन्न हुनुभयो। ध्रुवको उत्तम स्तुति, भक्ति र तपस्याबाट खुसी भएर उहाँ जपको अन्तिम समयमा प्रकट हुनुभयो र ध्रुवलाई हेरेर हितकारक वचन बोल्नुभयो ॥४९–५०॥

हे बालक ! तिमीले सम्पूर्ण भोग्य वस्तुलाई त्यागेर तँ–म,तेरो–मेरो भन्ने द्वन्द्वभावलाई छोडी कठिन तपस्या गऱ्यौ। निश्चल भएर प्राणी नभएको यस ब्रह्मशेखर नाम गरेको शिखरमा तिमीले मेरो आराधना गऱ्यौ। त्यसैले हे ध्रुव ! म तिमीलाई निश्चल हुने वर दिन्छु, एकचित्त भई सुन ॥५१–५३॥

हे ध्रुव ! बाबुको अपमानले गर्दा तिमीले यहाँ आएर तपस्या गरेका थियौ। तसर्थ मेरो कृपाले तिमी सबैभन्दा माथि ऐश्वर्यशाली भएर बस। आजदेखि तिमी सबै लोकभन्दा माथि रहेको सुमेरु पर्वत–शिखरको उत्तम स्थानमा सबैको पूज्य भएर अस्थिर भई बस। यसरी निश्चल भएर त्यहाँ तिमी बसेपछि त्यस लोकलाई मानिसहरू ध्रुवलोक भन्नेछन्। अरू सबै लोकहरू चलायमान हुन्छन् तर तिम्रो लोक निश्चल हुनाले त्यहाँ तिमी निश्चल भएर बस ॥५४–५६॥

कार्तिक स्वामीले भन्नुभयो– यसरी ध्रुवलाई वर दिएर भगवान् शिवजी अन्तर्धान हुनुभयो। त्यसैबेला ब्रह्माले आएर प्रसन्न हुँदै उनलाई अभिषेक गर्नुभयो। त्यसपछि उहाँ आफ्नो इच्छाअनुसार हिँड्ने रथमा ध्रुवलाई राखेर गान, बजान आदि उत्सव गर्दै अप्सराहरूका साथमा सुमेरु पर्वतको अग्लो शिखरमा जानुभयो। त्यसपछि देवताहरूको वासस्थल बनेको सबैभन्दा अग्लो सुमेरु पर्वतको शिखरमा ब्रह्माले ध्रुवलाई राखिदिनुभयो। त्यसै समयदेखि ध्रुव सबभन्दा माथि रहेका छन् ॥५७–५८॥

---

२५. एकचित्तसमावृत्तः, इति न.सं.पु.पाठः।
२६. लोका, इति न.सं.पु.पाठः।
२७. श्रुतः, इति न.सं.पु.पाठः।
२८. ध्रुवत्वं निश्चलो भव, इति न.सं.पु.पाठः।
२९. तत्र संस्थापयेद् ब्रह्मा ध्रुवः सर्वोन्नत तदा, इति न.सं.पु.पाठः।

ब्रह्माऽपि चक्रे सुतपः कठोरं यत्राऽशु देव्या द्विजशापमाप्ताः ।
देव्या रहः स्थानगतापराधात् वृक्षत्वमाप्ता[30] हि ततोऽभवँस्ते ॥६०॥

इति श्रीस्कन्दपुराणे हिमवतखण्डे ध्रुवतपःसिद्धि नाम द्वाविंशतितमोऽध्यायः ॥२२॥

---

हे अगस्त्य मुनि ! ध्रुवपद भनी मानिएको यो त्यही उच्चस्थान हो जुन ठाउँमा ब्रह्माले पनि कठोर तपस्या गर्नुभएको थियो र जुन ठाउँमा देवी पार्वतीसँग एकान्त स्थानमा भगवान् शिव बसेका अवस्थामा गएको हुनाले देवताहरूले पनि सराप पाएका थिए र जुन सरापले गर्दा ती सबै देवताहरूले त्यस स्थानमा वृक्ष बन्नुपरेको थियो ॥६०॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवतखण्डमा ध्रुवलोकको अधिपतिका रूपमा ध्रुवको अभिषेकनामक एक्काइसौँ अध्याय पूर्ण भयो।

परात्परा वाग्वादिनी भगवतीको असीम अनुकम्पाबाट पोरकनी पाल्पा निवासी पतिव्रताशिरोमणि स्वर्गीय माताश्री दिव्यलक्ष्मी ढकाल र सज्जनमुकुटमणि स्वर्गीय पिताश्री चूडामणि ढकालका कनिष्ठ पुत्र नेपाल संस्कृत विश्वविद्यालय सेवा आयोगका अध्यक्ष प्रा. डा. वेणीमाधव ढकालद्वारा गरिएको महर्षि वेदव्यासरचित स्कन्दमहापुराणअन्तर्गत हिमवतखण्डको अभिनव सम्पादन एवं नरहरिनामक नेपाली भाषानुवादमा हिमालयदिक्पालप्रकरण प्रकरण पूरा भयो।

---

३०. प्राप्तेन वृक्षा, इति न.सं.पु.पाठः।

शरीरं भौतिकञ्चैतत् क्षणिकं श्रूयतां सुराः ।
दास्याम्यहमिदं नूनं युष्मदुद्धरणाय वै ॥
इत्युक्त्वाऽसौ दधीचिश्च मोक्षदं तीर्थसुन्दरम् ।
गत्वा तत्र हि योगेन पञ्चत्वं प्राप्तवान् ध्रुवम् ॥

*(हिमवत्खण्ड, प्रकरण – २, अ. – ३१, श्लो. – ३३–३४)*

अर्थ –

हे देवता हो ! पृथ्वी, जल, तेज, वायु र आकाश यी पञ्चमहाभूतले बनेको यो शरीर क्षणिक र नश्वर छ । त्यसैले तिमीहरूको उद्धारका निमित्त म तिमीहरूलाई मेरो यो पाञ्चभौतिक शरीर दानमा अर्पण गर्दछु। यति भनेर दधीचि ऋषिले मोक्षदायक सुन्दर तीर्थमा गएर योगसमाधिद्वारा आफ्नो शरीर त्याग गरे।

# त्रयोविंशतितमोऽध्यायः

स्वर्गमाक्रमितुं दैत्यानां गुप्तमन्त्रणा

अगस्त्य उवाच

कथं शापं ददौ देवी सर्वभूतदयावती। देवेभ्यः सकलेभ्यश्च वृक्षतांश्च प्रापिताश्च ते ॥१॥
एतदिच्छाम्यहं श्रोतुं वद मे शङ्करात्मज। काऽसौ देवी महातेजास्तस्या माहात्म्यमुत्तमम् ॥२॥
कस्मिन्क्षेत्रे महापुण्ये सा तिष्ठति निरन्तरम्। तस्या नाम महासेन तत्तीर्थस्य विशेषतः ॥३॥

स्कन्द उवाच

शृणु कुम्भज वक्ष्यामि चैकचित्तः समाहितः। यथावृत्तं पुरा दिव्यं यत्त्वं मां परिपृच्छसि ॥४॥
ब्रह्मपुत्रो नदश्रेष्ठः कामधारा नदी वरा। तयोर्मध्ये महाशैलो नीलपर्वतशेखरः[२] ॥५॥
कामक्षेत्रमिति ख्यातं सर्वक्षेत्रोत्तमोत्तमम्। तस्मिन्क्षेत्रे महापूते सर्वेप्सितफलप्रदे ॥६॥
आसीद्धीमन्महादेवी कामाख्या नाम विश्रुता। या स्तुता ब्रह्मणा पूर्वं विष्णुनेत्रस्थिता सती ॥७॥
सा माया योगिनी नित्या योगिनीकोटिसेविता। यद्यत् काङ्क्षन्ति ते भक्ताः प्राप्नुवन्ति च तत्फलम्[३] ॥८॥
कस्मिँश्चिदिवसे धीर गच्छति स्म महेश्वरः। त्यक्त्वा स्वर्गं गणान्देवान्कामक्षेत्रे रसातले ॥९॥
हर्षस्थितो हरस्तत्र कामाख्यायाः समं तदा। रहःस्थानमिति ज्ञात्वा ततो देवो मुदं ययौ ॥१०॥

---

अध्याय– २३

स्वर्गमा आक्रमण गर्न दैत्यहरूको गुप्तमन्त्रणा

अगस्त्यले भन्नुभयो – हे कार्तिक स्वामी ! सम्पूर्ण प्राणीहरूलाई दया गर्ने भगवती देवीले कसरी सम्पूर्ण देवताहरूलाई सराप दिनुभयो र उनीहरू वृक्षको रूपमा परिणत हुनुपर्‍यो। ती तेजस्वी देवी को हुन् ? तिनको उत्तम माहात्म्य के छ ? यो सबै मलाई बताउनुहोस्, म सुन्न चाहन्छु। हे कार्तिक स्वामी ! कुन पुण्यमय क्षेत्रमा ती भगवती रहनुहुन्छ ? विशेष गरी त्यो तीर्थको नाम मलाई बताउनुहोस् ॥१–३॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! एकचित्त भएर सावधानसित सुन्नुहोस्। जुन विषयमा तपाईं मसँग सोधिरहनुभएको छ, त्यस विषयमा पहिले भएको एउटा घटना पनि म बताउनेछु। नदमा श्रेष्ठ ब्रह्मपुत्र र उत्तम नदी कामधाराको मध्यभागमा नीलाचल नामक थुम्को भएको एउटा ठूलो पर्वत रहेको छ। त्यसलाई कामक्षेत्र भन्दछन्। त्यो सबै क्षेत्रमा उत्तम क्षेत्र मानिएको छ। सम्पूर्ण इच्छा पूर्ण गर्ने त्यस क्षेत्रमा कामाख्या नाम गरेकी अत्यन्त पवित्र महादेवी हुनुहुन्छ। अघि ब्रह्माजीले विष्णुको आँखामा रहेकी यी देवीको स्तुति गर्नुभएको थियो। ती महामाया योगिनी नित्य हुनुहुन्छ र करोडौं योगिनीहरूले उहाँको सेवा गरिरहन्छन्। जसले उहाँको भक्ति गर्छन् र जे–जे चाहन्छन् तिनले त्यही–त्यही फल उहाँबाट पाउँछन् ॥४–८॥

कुनै समयमा देवता र आफ्ना गणहरूलाई स्वर्गमा छाडेर महादेव पृथ्वीको त्यस कामक्षेत्रमा जानुभयो।त्यस क्षेत्रमा एकान्तस्थल छ भन्ने थाहा पाएर कामख्यादेवीका साथ भगवान् शङ्कर अत्यन्त आनन्दपूर्वक बस्नुभएको थियो ॥९–१०॥

---

१. वृक्षाङ्गान्, इति न.सं.पु.पाठः।
२. नीलाचलाख्यशेखरः, इति न.सं.पु.पाठः।
३. यं यं कामन्ति भक्त्या ते तस्यां लभन्ति तञ्च तम्, इति न.सं.पु.पाठः।

तत्स्थानं त्यक्तुमीशानो न[४] समर्थोऽभवन्मुने। कामाख्यामोहितो देवः कुत्रचिन्न चचार सः ॥११॥
एकस्मिन्[५] दिवसे ज्ञात्वा नारदोऽसौ महामुनिः। रुद्रो न विद्यते स्वर्गे विचार्य कलहप्रियः ॥१२॥
ययौ यत्र मुदा युक्तो हिरण्यकशिपुर्लघु। दानवेन्द्रो महावीरः सभामध्ये स्थितो यदा ॥१३॥
स्वर्णसिंहासनासीनः सर्वदैत्यैश्च संवृतः। नानावृत्तान्तमाकर्ण्य स्वचराणां मुखाच्च्युतम् ॥१४॥
गीतै रुद्रयशोभूतैर्मृदङ्गैस्तालनिस्वनैः। नवरसान्वितैर्नृत्यैः सततञ्च सुसेवितः ॥१५॥
तस्मिन्काले ददर्शाऽऽर्य्यं हिरण्यकशिपुर्मुनिम्। समायान्तं मुदा युक्तमवतरन्तमम्बरात्[६] ॥१६॥
गीतवाद्यमहोल्लासं प्रगायन्तं विभोर्यशः। वीणाहस्तं स्वरैर्युक्तं मलिनं मधुरस्वरम् ॥१७॥
दृष्ट्वा तं वै समायान्तं सभान्तिके च नारदम्। प्रत्युद्ययौ समं क्षिप्रं हिरण्यकशिपुर्गणैः ॥१८॥
ततो ननाम दैत्येशः सम्पूज्य पूजनैर्मुनिम्। समानीय तदा विप्र स्वासने संन्यवेशयत् ॥१९॥
पप्रच्छ कुशलं पूर्वं वृत्तान्तं नारदं पुनः। स्वागतं भो मुनिश्रेष्ठ किं कुर्मोऽत्र[७] वदाऽऽशु मे ॥२०॥

नारद उवाच

नाऽहं यदृच्छया वत्स तव स्नेहादिहागतः। काञ्चिद्वार्त्तां समादाय स्वर्गस्येह च साम्प्रतम् ॥२१॥
शृणु दैत्य प्रवक्ष्यामि यद्वृत्तान्तं दिवो भुवः[८]। त्रासवन्तः सुराः सर्वे भयात्त्वत्तो[९] न संशयः ॥२२॥
महादेवो गतो वत्स कामाख्या यत्र तिष्ठति। मुमुदे सुचिरं कालं रहःस्थाने महाविभुः ॥२३॥
ततः स्वर्गे सुराः सर्वे चिन्तयन्ति नृपाधुना[१०]। लुण्ठिष्यन्त्यसुराः सर्वे नश्चेहेति न संशयः ॥२४॥
रुद्रं विनाऽसुरा नाकमाक्रमिष्यन्ति निश्चितम्। क्व गच्छामो वयं देवा उपायः कश्च[११] साम्प्रतम् ॥२५॥
एवं चिन्ताकुला देवा भवेयुर्नात्र संशयः। इति सत्यं हि जानीयात् गच्छामि शिवमस्तु ते ॥२६॥

---

हे अगस्त्य मुनि ! त्यस ठाउँलाई भगवान् शङ्करले छोड्न सक्नुभएन। कामख्याबाट मोहित भएर महादेव कतै हिँड्नुभएन। एकदिन कलहप्रिय नारद ऋषि स्वर्गमा भगवान् रुद्र हुनुहुन्न भन्ने थाहा पाएर आनन्दसित सभामा बसिरहेका दानवका राजा महावीर हिरण्यकशिपुलाई भेट्न गए ॥१२-१३॥

त्यतिबेला त्यो दैत्य दानवहरूको मुखबाट निस्किएका विभिन्न कथाहरू सुनेर सबै दैत्यहरूका साथ सुनको सिंहासनमा बसेको थियो। त्यहाँ मादल र तालको स्वरमा भगवान् शङ्करका कीर्तिमय गीतहरू घन्किएका थिए। निरन्तर नवैरसले युक्त नृत्यहरू भइरहेका थिए। त्यसैबेला हिरण्यकशिपुले आकाशमार्गबाट प्रसन्न मुद्रामा सरासर ओर्लन लागेका नारद मुनिलाई देख्यो ॥१४-१६॥

गायन तथा वादनको उल्लासले युक्त हुँदै भगवान्‌को कीर्ति गाउने, वीणा हातमा लिएका, मधुर स्वर भएका, सभाको नजिकै आइपुगेका मालाधारी नारदलाई देखेर हिरण्यकशिपु आफ्नो दलबलका साथ तुरुन्तै उठेर अगाडि गयो। त्यसपछि हिरण्यकशिपुले पूजासामग्री लिएर नारदको पूजा गर्‍यो, अनि आफ्नो आसनमा ल्याएर बसाल्यो। सर्वप्रथम उसले नारदलाई कुशल प्रश्न सोध्यो र भन्यो – हे मुनिश्रेष्ठ ! हजुरको स्वागत छ, के गर्नुपर्‍यो ? मलाई भन्नुहोस् ॥१७-२०॥

नारदले भने – हे बाबु ! म आफूखुसी यहाँ आएको होइन, तिम्रो स्नेहले गर्दा स्वर्गको र यहाँको पनि केही समाचार लिएर आएको छु। हे दैत्य ! स्वर्ग तथा पृथ्वीको जस्तो खबर छ त्यो म तिमीलाई बताउँछु, सुन। देवताहरू सधैँ तिमीबाट डरले त्रस्त हुन्छन्, यसमा शङ्का छैन। हे बाबु ! जहाँ कामाख्यादेवी बस्नुभएको छ, महादेव त्यसै स्थानमा जानुभएको छ। महादेव एकान्तस्थलमा धेरै समयसम्म आनन्द लिएर बसिरहनुभएको छ ॥२१-२३॥

स्वर्गका सारा देवताहरू राक्षसहरूले अवश्य पनि हाम्रो सम्पत्ति लुट्छन् भनेर अहिले चिन्तित भएर बसेका छन्। शिवजी नभएको बेला पारेर राक्षसहरूले अवश्य पनि हामीमाथि आक्रमण गर्नेछन्, अब हामी सबै देवताहरू कहाँ जाने भनेर चिन्तित भएका छन्। यसमा कुनै शङ्का छैन, यो कुरालाई वास्तविक मान। म जान्छु, तिम्रो कल्याण होस् ॥२५-२६॥

---

४. त्यक्तुमीशान असमर्थः, इति न.सं.पु.पाठः। ५. एकदा, इति न.सं.पु.पाठः। ६. व्याम्नो चावतरन्तमम्बरात्, इति न.सं.पु.पाठः।
७. कुर्वामो, इति न.सं.पु.पाठः। ८. भुवाम्, इति न.सं.पु.पाठः। ९. त्वत्तो भयात्, इति न.सं.पु.पाठः।
१०. स्म साम्प्रतम्, इति न.सं.पु.पाठः। ११. अन्यथा स्वश्च, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

ततो गते मुनौ धीमान् हिरण्यकशिपुस्तदा। समाकर्ण्य च तद्वार्त्तां नारदात्सम्प्रहर्षितः ॥२७॥
आह्वयत्सर्वदैत्यांश्च बालवृद्धान् वयःस्थितान्। ततः समाययुः क्षिप्रं सुरद्विषस्तदन्वयाः ॥२८॥
तत आहूय तद्गोष्ठ्यां वयस्त्रैविध्यसंयुतान्[१२]। महात्मानो महावीरान् क्रमात्तान् संन्यवेशयत्[१३] ॥२९॥
हिरण्यकशिपुर्वीरो मन्त्रयामास चासुरैः। सार्द्धं वृद्धैरमात्यैस्तैर्मन्त्रणादक्षमन्त्रिभिः[१४] ॥३०॥

हिरण्यकशिपुरुवाच

भो भो दैत्या महाभागाः सर्वोन्नतपराक्रमाः। वार्त्तां यूयं शृणुध्वं मे छिद्राख्याञ्च दिवौकसाम् ॥३१॥
विबुधा भयभीताः स्युरस्माकमोजसार्दिताः। अस्मान्[१५] समाक्रमिष्यन्ति स्वर्गञ्चेति विनिश्चिताः ॥३२॥
स्वर्गं त्यक्त्वा महादेवो गतोऽन्यत्र महीतले। यत्र तिष्ठति कामाख्या योगिनीवृन्दसेविता ॥३३॥
इदानीं स्वर्महोत्पाता भवन्ति चेति संशिनः। कथं रुद्रं विना देवैः स्थीयते विह्वलैरिह[१६] ॥३४॥
एवञ्च कथितं मह्यं नारदेन च धीमता। मम चारैर्विशेषेण किङ्कर्त्तव्यं तदुच्यताम् ॥३५॥

स्कन्द उवाच

श्रुत्वैतद्वचनं दैत्या हिरण्यकशिपोर्मुने। मन्त्रयामासुरारात्तु पृथक् च मन्त्रिभिः समम् ॥३६॥
अनुह्लादो महावीरः सभामध्ये महामनाः। उवाच प्रथमं धीरः सर्वनीतिविशारदः ॥३७॥

अनुह्लाद उवाच

आत्मशक्तिञ्च न ज्ञात्वा कार्यमज्ञः करोति यः। स निन्द्यो हि विजानीयात्सर्वलोकैर्विडम्बितः ॥३८॥
आत्मशक्तिं विचार्याऽऽदौ कार्यञ्च कुरुते सदा। धीमान् यतो विडम्बं च न प्राप्नोति कदाचन[१७] ॥३९॥

---

कार्तिक स्वामीले भन्नुभयो – नारदमुनि गएपछि बुद्धिमान् हिरण्यकशिपुले नारदको मुखबाट निस्किएको वृत्तान्त सुनेर खुसी हुँदै बालक, वृद्ध र तन्नेरी तीनै किसिमका दैत्यहरूलाई बोलायो। तुरुन्तै राक्षसका सन्ततिहरू जम्मा भए। उनीहरू सबैलाई सभामा बोलाएर महावीर हिरण्यकशिपुले आसनमा बसाल्यो। वीर हिरण्यकशिपुले राक्षसहरू, त्यसमा पनि वृद्ध र सल्लाह दिन सक्ने मन्त्रीहरूसँग सल्लाह लियो ॥२७–३०॥

हिरण्यकशिपुले भन्यो – अत्यन्त पराक्रमशाली भाग्यमानी हे दैत्य हो ! तिमीहरू देवताहरूको छिद्रसगँ सम्बद्ध समाचार सुन। यसबेला हाम्रो तेजबाट आत्तिएका देवताहरू राक्षसहरूले हामीमाथि आक्रमण गर्छन् भन्ने निश्चय गरी डराउन थालेका छन्। जहाँ योगिनीहरूद्वारा सेवित कामाख्यादेवी बस्नुहुन्छ, महादेव यस समयमा स्वर्ग छाडेर पृथ्वीतलको त्यसै स्थानमा जानुभएको छ। अब स्वर्गमा ठूला उत्पात हुन्छन् भन्ने शङ्का गर्दै देवताहरू रुद्रविना हामी यहाँ कसरी बसौँ भनेर आत्तिएका छन्। बुद्धिमान् नारद र विशेष गरी मेरा दूतले यो कुरा मलाई बताए, अब के गर्ने? बताओ ॥३१–३५॥

कार्तिक स्वामीले भन्नुभयो – हिरण्यकशिपुले भनेको यो कुरा सुनेर दैत्यहरूले मन्त्रीहरूका साथ तुरुन्तै सरसल्लाह गरे।त्यसपछि सर्वप्रथम सम्पूर्ण नीतिशास्त्रका ज्ञाता महामना, महावीर अनुह्लादले सभामा भन्यो ॥३६–३७॥

अनुह्लादले भन्यो – आफ्नो सामर्थ्य विचार नगरीकन जुन मूर्खले काम गर्छ, त्यो व्यक्ति निन्दनीय र उपहासको पात्र बन्न पुग्छ भन्ने कुरा बुझ्नुपर्छ। हे दैत्यहरू हो ! आफ्नो शक्ति विचार गरेर जसले काम गर्छ, त्यो बुद्धिमान् व्यक्ति उपहासको पात्र हुँदैन ॥३८–३९॥

---

१२. त्रिविधवयसस्तदा, इति न.सं.पु.पाठः।
१३. क्रमात्तानुपवेशयत्, इति न.सं.पु.पाठः।
१४. मन्त्रैर्निपुणमन्त्रिभिः, इति न.संसपु.पाठः।
१५. वयम्, इति न.सं.पु.पाठः।
१६. देवाः स्थीयन्ते चेह विह्वलाः, इति न.सं.पु.पाठः।
१७. न लभदैत्यसत्तमाः, इति न.सं.पु.पाठः।

प्रह्लाद उवाच

अनुह्लादेन सत्योक्तमस्मत्पथ्यं न संशयः। यत्र तिष्ठन्ति देवा वै सर्वशत्रुभयङ्कराः ॥४०॥
यत्र तिष्ठति शक्रश्च सर्वसैन्यगणैर्वृतः। दिक्पाला रक्षका यत्र यत्र शापायुधास्तथा ॥४१॥
यत्र भ्राम्यति सूर्य्योऽसावसह्या यस्य दीधितिः। यत्र भ्राम्यति शुभ्रांशुरसह्या यस्य रश्मयः ॥४२॥
यत्र विष्णुर्महातेजाः शत्रुहा गरुडध्वजः। यस्याऽसनेन पूर्वं नो बलं सैन्यं विदारितम् ॥४३॥
तत्र जयः कथं तात ह्यस्माभिर्वद लभ्यते। यदि तत्र हरिर्न स्याल्लभ्यते तत्सुनिश्चितम् ॥४४॥

संह्लाद उवाच

विष्णुरेव सुसम्मान्यो वरीयान् विष्णुरेव सः[१८]। विष्णुरुद्रौ न भिन्नौ च यथा विष्णुस्तथा हरः ॥४५॥
मान्येन पौरुषेणादौ[१९] समौ देवौ च पूजितौ। तौ लोकानां भवेतां वै नाऽवमान्यौ कदाचन ॥४६॥
रुद्रो नास्तीति कृत्वाद्य युध्यते च सुरैः[२०] समम्। अस्माभिस्त्रिदिवे तात सन्देहोऽत्र जये भवेत् ॥४७॥

निकुम्भ उवाच

अभ्युत्थानं परेषाञ्च स्थितानाञ्च बलीयसाम् ॥४८।
यैरिदं[२१] क्रियते तात स्वल्पशक्तिसमाहितैः। तेषां[२२]परिभवः प्रोक्तो बहुनीतिविशारदैः ॥४९॥
तस्मादुत्थापयेच्छ्रीमान् बहुशक्तिसमाहितः[२२क]। आत्मोदयं परच्छिद्रं यो जानाति स पण्डितः ॥५०॥
तस्माच्च नीतिभिः स्वामी सैन्यं परेषु योजयेत्। आदायेषद्गुणान्धीमान् चतुरङ्गबलान्वितः ॥५१॥
नीत्या च बलिभिस्तात युद्धं कुर्यात् परैः सह।

---

प्रह्लादले भने – अनुह्लादले अवश्य नै हितकारक सत्य कुरा बोलेका हुन्, यसमा शङ्का छैन। जहाँ सबै शत्रुभन्दा डरलाग्दा देवताहरू रहेका छन्, सम्पूर्ण सेनाले युक्त भएर इन्द्र बसेका छन्, विभिन्न शस्त्र–अस्त्रले युक्त भएका दिक्पालहरू जसका रक्षक छन्, जहाँ असह्य किरणले युक्त भएका सूर्य र अत्यन्त शीत किरणले युक्त चन्द्रमा घुम्दछन्, जहाँ सम्पूर्ण हाम्रो सैन्यलाई नाश गर्ने अत्यन्त तेजस्वी शत्रुहन्ता विष्णु छन्, तिनैका वाहन गरुडले पहिले हाम्रा बलशाली सेनालाई सखाप पारेका थिए, हे पिताजी ! त्यस्तो स्थलमा हाम्रो विजय कसरी सम्भव हुन्छ ? यदि त्यहाँ विष्णु नभएको भए अवश्य पनि हाम्रो विजय हुन्थ्यो ॥४०–४४॥

संह्लादले भन्यो – विष्णुलाई हेप्न सकिन्न, उनी अत्यन्त बलिया छन्, विष्णु र रुद्र पृथक् छैनन्। जस्ता विष्णु छन्, त्यस्तै रुद्र छन्, यी दुईमा भेद छैन। उनीहरू लोकसम्मानित पुरुषार्थका कारण सबैले समान रूपमा तिनको पूजा गर्दछन्। उनीहरूमध्ये कुनैको पनि लोकले अपमान गर्न सक्दैन। रुद्र छैनन् भनेर यदि हामीले स्वर्गमा देवताहरूसँग लडाईं गर्‍यौं भने विजय हुन्छ भनेर भन्न मुस्किलै पर्छ ॥४५–४७॥

निकुम्भले भन्यो – कम शक्ति भएकाले बलियो भएर बसेका शत्रुलाई आक्रमण गर्दा अवश्य हार हुन्छ भनेर नीतिवेत्ताहरूले भनेका छन्। आफ्नो उदय र शत्रुको छिद्रलाई हेरेर कार्य गर्ने व्यक्ति नै विद्वान् मानिन्छ। त्यसैले धेरै शक्ति एकत्रित गरी उनीहरूको छिद्र खोजी गर्न लाग्नुपर्छ। हे पिताजी ! तसर्थ राजाले सन्धि, विग्रह, यान, आसन, द्वैध र आश्रय, यी छवटा गुण हेरी चतुरङ्ग बलले सम्पन्न भएपछि मात्र नीतिपूर्वक बलिया शत्रुमाथि आक्रमण गर्नुपर्छ ॥४८–५१½॥

---

१८. न वरीयान्स विष्णुरेव, इति न.सं.पु.पाठः।
१९. पारुषेणादौ, इति न.सं.पु.पाठः।
२०. युध्यते दैवतैः, इति न.सं.पु.पाठः।
२१. येन च, इति न.सं.पु.पाठः।
२२. तस्य, इति न.सं.पु.पाठः।
२२क. समाहितैः, इति न.सं.पु.पाठः।

बलिरुवाच

काले च रिपुणा सन्धिः काले च युद्ध्यते परैः ॥५२॥

जयश्च[२३] प्राप्यते कालेऽकाले चैव पराजयः। कालमकालमज्ञात्वा यो युद्धयति परैः समम् ॥५३॥

सोऽचिरेणैव कालेन विपद्यते महानपि। कालकर्म विजानाति त्रिलोक्यां लभते जयम्[२३क] ॥५४॥

तस्मात् कालं विचाऽऽर्य्यादौ कर्म सङ्क्रियते बुधैः।

हिरण्याक्ष उवाच

एकस्मादपि चेत्त्रासो युष्माकं हृदि विद्यते ॥५५॥

बहुवीरैः प्रयुज्यन्ते कथं दैत्याः परैः सह। बहुबलैः संयुतो हि क्षुद्रो नैवाऽवमन्यते[२४] ॥५६॥

अपि हीनबलैर्वत्सा यदि तैः शस्त्रपाणिभिः। न योद्धव्यमपि क्षुद्रैर्बहुभिश्च कदाचन ॥५७॥

श्रुतं पिपीलिकाभिश्च कालसर्प्पो निपातितः। भयञ्चेद्विद्यते विष्णोर्युष्माकं दनुजा ध्रुवम् ॥५८॥

योद्धुमिच्छेऽहमाजौ वै तेन सार्द्धं न संशयः।

विप्रचित्तिरुवाच

अहोऽद्भुतं महत्तत्र यूयं मनस्विनो यतः ॥५९॥

पररन्ध्रं न जानीध्वे किं साधयत[२५] कर्मभिः। त्रस्यन्ति देवताः सर्वे विनेदानीं महेश्वरम् ॥६०॥

कथं नाके हि तिष्ठाम इति चिन्तासमाकुलाः। रोचते यदि चाऽस्मभ्य[२६]मेतस्मिन् समयेऽसुराः ॥६१॥

प्रस्थानमाजये कार्य्यं[२७] सर्वशत्रुविमर्दकम्। एतस्मिन्समये दैत्याः परच्छिद्रं महद् भवेत् ॥६२॥

सुनिश्चितेन योद्धव्यं पर[२८]भूत्यां कदापि न।

---

बलिले भने – समय अनुसार शत्रुसँग सन्धि पनि गर्नुपर्छ, युद्ध पनि गर्नुपर्छ। समय अनुसार गरेको युद्धले विजय प्राप्त हुन्छ, असमयमा गरेको युद्धले पराजय हुन्छ। जो व्यक्ति समय–असमयको विचार नगरी शत्रुसँग युद्ध गर्छ, त्यो जतिसुकै ठूलो भए पनि आपत्तिमा पर्छ। अवस्था अनुसारको कामगर्न जान्यो भने त्यसले तीनै लोकमा विजय प्राप्त गर्छ। त्यसैले विद्वान्हरू सर्वप्रथम समयको विचार गरेर मात्र काम गर्छन् ॥५२–५४॥

हिरण्याक्षले भन्यो – एउटै शत्रुदेखि पनि तिमीहरूको हृदयमा भय छ भने त्यस्ता धेरै शत्रुसँग युद्ध गर्नु परे तिमीहरू कसरी युद्ध गरौला? सानै भए पनि धेरै फौजसित रहेको व्यक्तिलाई हेप्नु हुँदैन। हतियार कमजोर छ भने धेरैले पनि केही लछार्दैनन्। फेरि क्षुद्रै भएता पनि धेरै छन् भने तिनीहरूसँग युद्ध गर्नुहुँदैन। तिमीहरूले धेरै कमिला मिलेर विशाल सर्पलाई मारेको देखेकै छौ, तिमीहरू सबैलाई विष्णुदेखि डर लाग्छ भने म एक्लै उनीसँग लडौँला, यसमा शङ्का गर्नुपर्दैन ॥५५–५८½॥

विप्रचित्तिले भन्यो – यहाँ सबैका कुरा सुनेर मलाई ठूलो आश्चर्य लाग्यो, जसले शत्रुमा परेको अप्ठ्यारो बुझ्न सक्दैनन्, तिनले युद्धमा अघि सरेर के गर्लान् ? यसबेला महादेव स्वर्गमा छैनन्, सबै देवताहरू डराएका छन्, अब हामी कसरी अड्ने भन्ने उनीहरूलाई चिन्ता छ। यहाँभन्दा बढी उनीहरूको कमजोरी कहिले भेट्टाउने ? मलाई लाग्छ– हे असुर हो ! शत्रुहरूको नाश गर्न आजै प्रस्थान गरौँ। यो शत्रुको सबैभन्दा ठूलो कमजोरी भएको अवस्था हो। आजको साइत असल छ, सारा शत्रुलाई समाप्त गर्न सकिन्छ, अवश्य हाम्रो विजय हुन्छ, उनीहरू सम्पन्न भएको अवस्थामा कदापि जित्न सकिँदैन ॥५९–६२½॥

---

२३. जयञ्च, इति न.सं.पु.पाठः।

२३क. त्रिलोकेषु त्रयं लभेत्, इति न.सं.पु.पाठः।

२४. प्रयुक्तोऽपि क्षुद्रानावमन्यते, इति न.सं.पु.पाठः।

२५. परं रन्ध्रं न जानन्ति किं साधिष्यन्ति, इति न.सं.पु.पाठः।

२६. अस्माकम्, इति न.सं.पु.पाठः।

२७. प्रस्थानं गमनायाद्य, इति न.सं.पु.पाठः।

२८. वरभूत्याम्, इति न.सं.पु.पाठः।

मय उवाच

विप्रचित्तेन दैतेयाः सत्यमुक्तं न संशयः ॥६३॥
इदानीं गम्यतामेव[२९] भूत्यै जयाय चाऽऽत्मनः। विद्यते हृदि कांक्षा चेद्युष्माकं दैत्यसत्तमाः ॥६४॥
स्वर्गेऽमरावतीराज्यं कर्त्तुं निष्कण्टकं यदि। आहूयतां बलान्यद्य हिरण्यकशिपो विभो ॥६५॥
सन्नह्यताञ्च युद्धार्थं सर्वमेव[३०] च सामप्रतम्। न स्थातव्यं चिरं कालमाहूय सर्वसैनिकम् ॥६६॥
चतुरङ्गबलोपेतैर्गम्यतां दैत्यसत्तम।

स्कन्द उवाच

निशम्येति वचो विप्र चाऽन्येषां हि मयस्य च ॥६७॥
मत्वा तथ्यं तदा धीमान् स्वर्गराज्यमियेष सः। हिरण्यकशिपुः सैन्यमाह्वयामास तत्क्षणात् ॥६८॥
आगतेभ्यश्च सर्वेभ्यो बालवृद्धेभ्य एव च। आज्ञापयत्ततो धीमान् हिरण्यकशिपुर्मुदा ॥६९॥
विप्रचित्ताय दैत्याय तथाऽन्येभ्यश्च मन्त्रिणे।

हिरण्यकशिपुरुवाच

भो भो दैत्याश्च युष्माभिर्नह्यन्तां कवचोत्तमाः[३१] ॥७०॥
गृह्यन्तां वरशस्त्राणि तथा चाऽस्त्राणि साम्प्रतम्। अङ्गानि वाजिनाञ्चैव महिषाणां च हस्तिनाम्[३२] ॥७१॥
खराणाञ्च तथोष्ट्राणां नह्यन्तां कवचैः ध्रुवम्। सर्वशिल्पविदार्य्य त्वं सम्यग्रथं सुनिर्भयम्[३३] ॥७२॥
सर्वरथोत्तमं मह्यं कामगं बहुचित्रकम्। नानाशस्त्राणि चाऽस्त्राणि निर्माय दीयतां[३४] बहु ॥७३॥
मायापाशञ्च शक्तिञ्च तिरस्करणमाशुगम्।

---

मयले भन्यो – हे दैत्य हो ! विप्रचित्तिले जुन कुरा भन्यो, त्यो सबै ठीक छ, यसमा शङ्का छैन। अहिले नै आफ्नो विजय र ऐश्वर्य प्राप्तिका लागि गइहालौँ। हे हिरण्यकशिपु ! हे प्रभो ! यदि हजुरलाई अमरावती राज्य जितेर स्वर्गमा निष्कण्टक राज्य गर्ने चाहना छ भने युद्धका लागि अहिले नै तयारी गरौँ, सबै सेनाहरूलाई बोलाएर धेरैबेर यहाँ नबसौँ, चारै अङ्गले युक्त भएका सेनाका साथ अब लड्न हिँडौँ ॥६३-६६॥

कार्तिक स्वामीले भन्नुभयो – यसरी अरू दैत्य र मयको कुरा सुनेर हिरण्यकशिपुले सभामा बालक, वृद्ध र युवा सबैलाई सुनाउँदै भन्यो – उचित अवसरमा स्वर्गको राज्य लिनैपर्छ, छोड्नु हुँदैन। त्यसपछि उसले सबै फौजहरूलाई बोलाएर युद्धको तयारी गर भनी प्रधानमन्त्री विप्रचित्ति र अरू दैत्यहरूलाई पनि निर्देशन दियो ॥६७-६९॥

हिरण्यकशिपुले भन्यो – हे दानव हो ! तिमीहरू उत्तम कवच धारण गर। शस्त्र, अस्त्र, हात्ती, घोडा, राँगो, ऊँट, टट्टु, गधा जति छन्, तिनीहरूलाई कवच लगाइदेओ ॥७०-७१॥

हे मय! तिमी सबै शिल्पमा कुशल छौ, मेरा निमित्त सर्वोत्कृष्ट, कतै नरोकिने, कसैबाट भय नहुने, विभिन्न चित्रले सजिएको, विचित्र शक्ति भएका शस्त्र, अस्त्रआदिद्वारा सुसज्जित, मायापाश र शक्तिसमेत भएको अत्यन्त छिटो हिँड्ने र अरूलाई तिरस्कार गर्ने एउटा रथ तयार पार ॥७२-७३॥

---

२९. इदानीमेव गम्यन्ताम्, इति न.सं.पु.पाठः।
३०. सर्व एव, इति न.सं.पु.पाठः।
३१. कवचोत्तमैः, इति न.सं.पु.पाठः।
३२. हस्तिनां वाजिनां चैव महिषाणां तथैव च, इति न.सं.पु.पाठः।
३३. सुनिर्मलम्, इति न.सं.पु.पाठः।
३४. बहुशो, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

वचो निशम्य विप्रेश दैत्यराजस्य तत्क्षणात्[३३] ॥७४॥
आनीतवान् ततो धातून् मयः शिल्पाय तत्र च ॥७५॥
आदाय चाऽऽज्ञां प्रशभं मयस्तद् दिव्यं रथं कामगमग्निदीप्तम्।
चेष्टाविशेषैर्हि[३४] चकार नूनं जाम्बूनदं प्राक्खचिताद्यवर्णम्[३५] ॥७६॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे दैत्यमन्त्रणं नाम त्रयोविंशोऽध्यायः ॥२३॥

---

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! दैत्यराज हिरण्यकशिपुको निर्देशन सुनेर मयले त्यस्तैकिसिमका रथहरू तयार पार्नका लागि तुरुन्त विभिन्न धातुहरू मगायो। त्यसपछि हिरण्यकशिपुको आज्ञा अनुसार मय दानवले अनेक प्रयत्नका साथ सुवर्णमय, आगोको ज्वालाजस्तै धपधप बल्ने, मोहडापट्टि सुन, हीरा आदि झल्कने र कतै नरोकिइकन हिँड्ने दिव्यरथ तयार पाऱ्यो ॥७५॥

परम्बा वाग्वादिनी भगवतीको असीम अनुकम्पाबाट पोरकनी पाल्पा निवासी पतिव्रताशिरोमणि स्वर्गीय माताश्री दिव्यलक्ष्मी ढकाल र सज्जनमुकुटमणि स्वर्गीय पिताश्री चूडामणि ढकालका कनिष्ठ पुत्र नेपाल संस्कृत विश्वविद्यालय सेवा आयोगका अध्यक्ष प्रा. डा. वेणीमाधव ढकालद्वारा गरिएको महर्षि वेदव्यासरचित स्कन्दमहापुराणअन्तर्गत हिमवत्खण्डको अभिनव सम्पादन एवं नरहरिनामक नेपाली भाषानुवादमा देवासुरसंग्राम प्रकरण पूरा भयो।

---

३५. साम्प्रतम्, इति न.सं.पु.पाठः।
३६. नानास्यचेष्टैर्हि, इति न.सं.पु.पाठः।
३७. खचिताद्यवर्णैः, इति न.सं.पु.पाठः।

# चतुर्विंशोऽध्यायः

## स्वर्गविजयार्थं हिरण्यकशिपुप्रभृतिदैत्यानां प्रस्थानम्

अगस्त्य उवाच

कथं दिव्यं रथं स्कन्द कृतवान्दैत्यसत्तमः । किंविशिष्टं मयो यानं सम्परायें[1] सुरद्विषाम् ॥१॥
यदि कृपा मयि स्कन्द विद्यते भवतोऽधुना । एतदिच्छाम्यहं श्रोतुं वद मे त्वं यथा विभो ॥२॥

स्कन्द उवाच

जाम्बूनदमयं दिव्यं सर्वावयवशोभितम् । माणिक्यखचितं शुभ्रं सञ्चकार रथं मयः ॥३॥
दृढं षोडशचक्रं तं मायामयसुकूबरम् । मेघनादरवोपेतं सहस्रनागवाहकम् ॥४॥
योजनार्द्धसमुत्सेधं विस्तारं च तदर्द्धकम् । उपसर्ज्जनसंयुक्तं बहुकूटान्तरे मुने ॥५॥
पद्मरागप्रवालाढ्यं वज्रवैदूर्य्यशोभितम् । पुष्परागमणिप्रख्यैर्मारकतैः सुशोभनम् ॥६॥
पञ्चरङ्गपताकाभिः सर्वरत्नैर्मनोहरम्[2] । नानाजन्त्वास्यनिर्म्माणसंवेष्टितं महोज्ज्वलम् ॥७॥
दिवाकरप्रभाप्रख्यं नानारङ्गसुशोभितम् । बहुचित्रसमायुक्तमीहाचेष्टामृगाननम् ॥८॥
उलूकध्वजसंयुक्तं पुरो देशे सुराजितम् । विराजमानमाभाभिः किङ्किणीजालमण्डितम् ॥९॥
रश्मिहस्तप्रयाणज्ञैश्चोपसर्ज्जनपण्डितैः[3] । कालज्ञैश्च महाप्राज्ञैस्तैश्च[4] सारथिभिर्युतम् ॥१०॥
नानाशस्त्रास्त्रसंयुक्तं रिपूणां भयदं मुने । बहुमायासमायुक्तं कामगं सुमनोहरम् ॥११॥

---

अध्याय – २४

स्वर्गमा विजयका लागि दैत्यहरूको प्रस्थान

अगस्त्य मुनिले भन्नुभयो – हे कार्तिक स्वामी ! मय दैत्यले कसरी त्यो दिव्य रथ बनायो ? दैत्यहरूलाई युद्धमा जानका लागि बनेको त्यस यानका के–के विशेषताहरू थिए ? म यो सबै कुरा सविस्तार हजुरबाट सुन्न चाहन्छु, जस्तो थियो, त्यस्तै बताउनुहोस् ॥१–२॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य ! मयले बनाएको रथ सम्पूर्ण अङ्गले सुशोभित सुवर्णमय र सुन्दर थियो, त्यसमा मणिहरू जडिएका थिए । त्यसका सोह्रवटा पाङ्ग्रा थिए । त्यो रथ हिँड्दा मेघ गर्जेजस्तो आवाज आउँथ्यो । त्यसलाई हजारवटा हात्तीले तान्नुपर्थ्यो । त्यो आधा योजन अग्लो र त्यसको आधा क्षेत्रफलमा फैलिएको थियो । त्यसका शिखरहरूमा विभिन्न मणिहरू खचाखच जडिएका थिए ॥३–५॥

चारैतिर पद्मराग र मुगाले जडिएको त्यो वज्रमणि र वैदूर्यमणिले सुशोभित देखिन्थ्यो । त्यस्तै पुष्परागमणि र मरकतमणिले त्यसको शोभालाई बढाएका थिए । पाँच रङ्ग भएका ध्वजा र सम्पूर्ण रत्नहरूले युक्त भएको त्यस र थमासिंह, व्याघ्र आदिजन्तुहरूका भर्खरै बोल्छन् कि जस्ता मुखाकृति अङ्कित थिए । सूर्यसमान उज्ज्वल त्यो रथ अनेक रङ्गले रँगाइएको थियो । त्यसमा अनेकथरी चित्र रँगिएका थिए । त्यसको मुहुडापट्टि ब्वाँसोको मूर्ति अङ्कित गरिएको थियो । त्यसमा उल्लूका चित्रले अङ्कित ध्वजा फहराइरहेका थिए । त्यो रथ सैनिकहरूको अगाडि खडा थियो । त्यसमा जडिएका मणिमाणिक्य आदि धातुको कान्तिले शोभायमान त्यस रथमा घुँघुरा आदिका जालीहरू झुन्ड्याइएका थिए । लगाम समातेर समय अनुसार रथ सञ्चालन गर्न सिपालु बुद्धिमान् सारथीले युक्त त्यो रथ निकै परिश्रमका साथ निर्माण गरिएको थियो । अत्यन्त सुन्दर त्यो रथ सारथिको इच्छा अनुसार चल्दथ्यो । त्यो रथ विभिन्न शस्त्र–अस्त्रले शत्रुहरूलाई त्रास पैदा गर्ने र जहाँ जे भन्यो त्यही पूर्ण गर्न सक्ने किसिमको थियो ॥१०–११॥

---

१. साम्पराये इति प्र.पु.पाठः ।
२. सर्वरत्नमयैः पुनः इति प्र.पु.पाठः ।
३. रश्मिहस्तप्रमाणज्ञश्चोपसर्जनपण्डितः इति प्र.पु.पाठः ।
४ कालज्ञश्च महाप्राज्ञस्तेन सारथिना युतम् इति प्र.पु.पाठः ।

एवं संसृज्य विप्रेश रथोत्तमं तदा मयः। ददौ दैत्येश्वरायाऽदौ सर्वलोकभयप्रदम् ॥१२॥
तमालोक्य रथं दिव्यं मुमोदाश्वसुरैः समम्। स्वबलयं ददौ तस्मै सभायां दनुजेश्वरः ॥१३॥
बहुचित्रप्रयुक्तेन कवचेन विराजता। सन्नद्धोऽभूत् ततो दैत्यो वज्रवैदूर्य्यसंयुतः ॥१४॥
ततो रथं रुरोहाऽशु हिरण्यकशिपुः स तम्। प्रायश्चित्तविधिं कृत्वा दानं दत्त्वा द्विजातये ॥१५॥
तत आश्वासयद्वाचा मधुरयँश्च सारथिम्। व्याचष्ट वचनं भूयस्तस्मै हि वदतांवरः ॥१६॥

हिरण्यकशिपुरुवाच

भो सारथे महाधीमन् वचनं मे शृणु ध्रुवम्। रक्षितव्यस्त्वयाऽहञ्च सङ्कटस्थो यदा पुनः ॥१७॥
अपोवाह्य रथं तस्मात् परस्परं तथाविधम्। सङ्कटस्थो यदा त्वं च रक्षणीयो मया पुनः ॥१८॥
एवं ज्ञात्वा विधिं यो हि यद्यऽन्योन्यं महायुधि। जयं च लभते सद्यो न च प्राप्नोति सङ्कटम् ॥१९॥

स्कन्द उवाच

हिरण्यकशिपोः श्रुत्वा वचनं मधुरं मुने। अङ्गीकृत्य स हर्षेण नमश्चकार[५] तं प्रभुम् ॥२०॥
तत आज्ञां समादाय प्रभोः सम्यग्घटोद्भव। सारथिश्चोदयामास हस्तिनो रथवाहकान् ॥२१॥
ततो भूयः स वै सम्यक् कृत्वा सज्जं रथोत्तमम्। तथाविधं ददौ दिव्यं हिरण्याक्षाय साम्प्रतम् ॥२२॥
हिरण्मयं महोज्ज्वलं[६] सर्वरत्नसुशोभनम्। अश्ववाहं महातुङ्गं सर्वशस्त्रास्त्रसंयुतम् ॥२३॥
रिपूणां भयदं क्षिप्रं सपताकध्वजोज्ज्वलम्। प्रह्लादाय ददौ विप्र मयो दिव्यरथं पुनः ॥२४॥
रौप्यकाञ्चनधातुभिर्निर्मितं[७] बहुचित्रकम्। पद्मरागप्रवालैश्च खचितं बहुशोभनम् ॥२५॥
पताकाभिश्च संयुक्तं सर्पयष्टिध्वजोत्तमम्। मृगास्यानामिहाचेष्टं संह्लादाय ददौ पुनः ॥२६॥

---

हे अगस्त्य मुनि ! यसरी सबै प्राणीहरूलाई त्रास पैदा गराउने रथको रचना गरेर मय दैत्यले हिरण्यकशिपुलाई दियो। त्यो दिव्य रथलाई देखेर राक्षसहरूका साथ रहेको हिरण्यकशिपु अत्यन्त प्रसन्न भयो र त्यसले सभामा मयलाई आफ्ना कुण्डल पुरस्कारस्वरूप दियो ॥१२-१३॥

त्यसपछि त्यो दैत्य विभिन्न किसिमका चित्रले युक्त भएको कवच पहिरिएर वज्र तथा वैदूर्यमणि लगाई युद्धमा प्रस्थान गर्न तयार भयो। युद्धका लागि प्रस्थान गर्नुअघि हिरण्यकशिपुले प्रायश्चित्त गऱ्यो, ब्राह्मणहरूलाई दान दियो र रथमा चढ्यो। उसले सारथिलाई मधुर वचनले आश्वासन दिँदै भन्न थाल्यो ॥१२-१६॥

हिरण्यकशिपुले भन्यो – हे सारथि ! यो विद्वान्हरूको सभामा म तिमीलाई केही भन्छु, सुन। जब सङ्कट आउँछ त्यसबेला तिमीले रथलाई फर्काएर वा घुमाएर मेरो रक्षा गर्नुपर्छ। त्यस्तै जब तिमीलाई सङ्कट पर्छ त्यस अवस्थामा म तिम्रो रक्षा गर्नेछु। यस विधिअनुसार जसले ठूलो युद्धमा एकले अर्कालाई सहयोग गर्छ, त्यसले विजय पाउँछ र उसले संकटको सामना गर्नुपर्दैन ॥१७-१९॥

कार्तिक स्वामीले भन्नुभयो – हिरण्यकशिपुको उपयुक्त भनाइ सुनेर सारथिले सहर्ष उसको वचन स्वीकार गऱ्यो र हिरण्यकशिपुलाई नमन गऱ्यो। हे अगस्त्य मुनि ! त्यसपछि हिरण्यकशिपुको आज्ञा लिएर सारथिले हात्ती र रथवाहक सैन्यलाई अगाडि बढायो। अनि मयले राम्रोसित सजिएको दिव्यरथ हिरण्याक्षलाई दियो। त्यो रथ घोडाले तान्ने, अत्यन्त अग्लो, सम्पूर्ण शस्त्र र अस्त्रले सुसज्जित शत्रुको हृदयमा भय उत्पन्न गराउने, छिटो दौडने र ध्वजापताकाले सुसज्जित थियो ॥२०-२३॥

हे अगस्त्य मुनि ! त्यसपछि मयले शत्रुहरूलाई अत्यन्तै भयप्रद, चाँदी र सुन मिसिएको, विभिन्न चित्रले युक्त, पद्मरागमणि र मुगा जडिएको, सातवटा दण्ड र विभिन्न पताकाले सुन्दर देखिने रथ प्रह्लादलाई दियो। मयले बाघको जस्तो चेष्टा देखाउने रथ संह्लादलाई दियो ॥२४-२६॥

---

५. वन्दयामास इति प्र.पु.पाठः।
६. महाज्ज्वालम् इति प्र.पु.पाठः।
७. बहुशो बहु, इति न.सं.पु.पाठः।
८. तुमूलयुद्धसह्यानि, इति न.सं.पु.पाठः।

रौप्यमयेन भूयोऽस्य चकार रथमुत्तमम् । नीलाभमणिभिश्चित्रं सर्वरत्नविभूषितम् ॥२७॥
कुक्कुटास्यध्वजोच्छ्रायं बहुरङ्गपताकिनम् । अष्टचक्रं सुशुभ्राभमनुह्लादाय सन्ददौ ॥२८॥
बहुधातुं समादाय ससर्ज्ज रथमुत्तमम् । अष्टचक्रञ्च लौहाढ्यं नानाज्योतिःसमाकुलम् ॥२९॥
किङ्किणीजालसंयुक्तं काकध्वजपताकिनम् । शस्त्रास्त्रैर्बहुभिर्युक्तं निकुम्भाय ददौ मयः ॥३०॥
अयोमयं रथं दिव्यं संसृज्य प्रसभं मयः । सुवर्णजालसंयुक्तं श्वेतध्वजसमन्वितम् ॥३१॥
सिताभ्राभैः ध्वजै रम्यै राजितञ्च[9] समुच्छ्रितैः । महिषं वाहकं कालं कालकाय ददौ पुनः ॥३२॥
जाम्बूनदमयं दिव्यं तप्तकाञ्चनसन्निभम् । वृषसिंहमुखैर्युक्तं नानारत्नसुनिर्म्मितम् ॥३३॥
मणिजालगवाक्षं च गृध्रध्वजपताकिनम् । नानाशस्त्रास्त्रसंयुक्तं बलये च ददौ मयः ॥३४॥
अष्टधातुमयं शुभ्रं रथं कनकभूषितम् । वैदूर्य्यपद्मरागैश्च मण्डितं परमाद्भुतम् ॥३५॥
लौहघण्टारवोपेतं महिषैः वाहनैर्युतम्[10] । शत्रुभयप्रदं घोरं प्रददौ विप्रचित्तये ॥३६॥
बहुचित्रं रथं दिव्यं सत्कृत्य परमाद्भुतम् । जाम्बूनदमयजालं किङ्किणीरवमण्डितम् ॥३७॥
चित्रध्वजं महाघोरं बहुखरैः प्रवाहकम् । शस्त्रास्त्रैश्च समाकीर्णं बाणाय सन्ददौ मयः ॥३८॥
एवं दत्त्वा रथाँस्तेभ्यः शिल्पकर्त्ता ततः पुनः । स्वयञ्चाऽपि रुरोहाऽसौ सर्वरथमनुत्तमम् ॥३९॥
सन्नह्य रथमारुह्य निर्ययुर्दैत्यसत्तमाः । त्रिंशत्कोटिरथानीकाश्चतुरङ्गबलैर्युताः ॥४०॥
आदौ शुभं स्वस्त्यनञ्च कृत्वा दत्त्वा हि दानानि वसूनि धीरः ।
विप्रेभ्य आर्य्यो दनुजाँश्च सर्वान् प्रास्थापयत्तान् खलु सङ्गराय ॥४१॥
इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे दैत्यनिर्य्याणं नाम चतुर्विंशोऽध्यायः ॥२४॥

---

फेरि मयले चाँदी नै चाँदीले युक्त रथ बनायो । नीलो कान्ति भएको मणिले गर्दा त्यो रथ विचित्र देखिन्थ्यो र सम्पूर्ण रत्नले सुशोभित थियो । त्यसका ध्वजामा कुकुरको मुखको चित्र राखिएको थियो । त्यो रथ रङ्गीबिरङ्गी पताकाले सुसज्जित थियो ॥२४-२७॥

मयले निकुम्भलाई आठ पाङ्ग्रा भएको, फलामै फलामले बनेको, विभिन्न ज्योतिले युक्त भएको, घुँघुराहरूले सजाइएको, कागको चिह्नले युक्त ध्वजा फहराइएको र विभिन्न शस्त्र–अस्त्रले सुसज्जित रथ दियो । यस्तै फलामले बनाइएको, सुन जडिएको, सेतो ध्वजाले युक्त भएको, सेतो मेघको जस्तो कान्तिले युक्त, अग्ला पताकाहरूले सुशोभित भएको, राँगाले तानिएको, कालो वर्ण भएको रथ बनाएर मयले कालनेमि नाम गरेको राक्षसलाई दियो ॥२८-३१॥

मयले बलिलाई सुवर्णमय, दिव्य, चहकिलो सुनको जस्तो कान्ति भएको, गोरु र सिंहको मुखको चित्रले युक्त भएको, विभिन्न किसिमका रत्नहरू जडिएको, मणिका आँखीझ्यालहरू भएको, गिद्धको चिह्नले युक्त ध्वजा र पताका भएको र विभिन्न शस्त्र–अस्त्रले सुसज्जित राँगोले तान्ने रथ बनाएर दियो ॥३२-३४॥

मयले आठ धातुले बनाइएको, सुन जडेको, वैदूर्य र पद्मरागमणिले सुशोभित, फलामे घण्टको आवाजले युक्त, राँगाले तान्नुपर्ने, शत्रुको मनमा त्रास उत्पन्न गराउने र अत्यन्त आश्चर्यलाग्दो रथ बनाएर विप्रचित्तिलाई दियो । यसैगरी मयले विभिन्न चित्रहरूले सजाइएको, अत्यन्त आश्चर्यलाग्दो, सुवर्णनिर्मित आँखीझ्याल भएको, घुँघुरको ध्वनिले विभूषित, विचित्र किसिमका ध्वजाले युक्त भएको, अत्यन्त डरलाग्दो, धेरै गधाले तान्ने र विभिन्न शस्त्र–अस्त्रले युक्त भएको रथ बनाएर बाणासुरलाई दियो । यसरी ती सबै राक्षसहरूलाई रथ दिएर मय आफू पनि उत्कृष्ट रथमा चढ्यो ॥३५-३९॥

मयले सबैलाई रथ प्रदान गरिसकेपछि चतुरङ्गिणी सेनासहितका तीस करोड रथारोही दैत्यहरू युद्धका लागि तयार भए । दैत्यहरू रथमा चढी युद्ध गर्नका लागि तयार भएपछि धैर्यशाली हिरण्यकशिपुले चारै अङ्गले युक्त भएका तीस करोड अक्षौहिणी सेना साथमा लिई पहिले कल्याणकारक स्वस्तिवाचन गरेर ब्राह्मणलाई धेरै सम्पत्तिहरू दान दियो र सबै दैत्यहरूलाई युद्धका लागि प्रस्थान गरायो ॥४०-४१॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गत हिमवत्खण्डको स्वर्गमा आक्रमणका लागि दैत्यहरूको प्रयाण नामक चौबीसौं अध्याय पूर्ण भयो ।

---

९. सताभ्राभिः पताकाभी राजितं च समुच्छ्रितैः, इति प्र.पु.पाठः । १०. महिषैश्च प्रवाहकम्, इति प्र.पु.पाठः ।

# पञ्चविंशोऽध्यायः

## देवानामसुराणाञ्च युद्धसज्जा

अगस्त्य उवाच

नारदोऽपि ययौ स्वर्गं यत्र तिष्ठति वासवः । वीणावाद्यमहोल्लासो गायंश्च मधुरस्वरैः ॥१॥
हर्षपूर्णो विवादज्ञः सर्वगः कलहप्रियः । ततः शक्राय तद्वार्त्तां वर्णयामास तत्क्षणात्[1] ॥२॥

नारद उवाच

देवराज महाप्राज्ञ शृणु वृत्तान्तमद्य वै । हिताय सर्वदेवानां मत्त एकमना विभो ॥३॥
हिरण्यकशिपुर्दैत्यः सन्नह्य कवचेन च । रथस्थो निर्ययौ देशाद् बहुसैन्यसमायुतः ॥४॥
त्रिंशत्कोटिरथानीकैः परिवार्य समन्ततः । आगमिष्यति युद्धाय श्वो वाऽद्य वाऽत्र पश्यताम् ॥५॥
त्वया सह सहस्राक्ष ज्ञात्वा नाऽस्तीति शङ्करः । सन्नह्यतां भवान्सैन्यैर्भद्राय स्वात्मनो दिवः ॥६॥

स्कन्द उवाच

श्रुत्वैतद्वचनं तस्य किञ्चित्त्रासं समागतः । आहूय सर्वदेवांश्च बृहस्पतिपुरोगमान् ॥७॥
सान्त्वयामास सुत्रामा स्वर्गरक्षार्थमादरात् । वाचा मधुरया सर्वान् विश्वकर्माणमाह्वयत् ॥८॥
आज्ञापयत्ततः शक्रो रथार्थं विश्वकर्म्मणे । समाहूय च तं पूर्वं बहुमानपुरस्सरम् ॥९॥

शक्र उवाच

विश्वकर्म्मन् महाप्राज्ञ सर्वकर्मविशारद । भविष्यति महायुद्धं दैवासुरं महदिह ॥१०॥
त्रिंशत्कोटिरथानीकैर्हिरण्यकशिपुर्युतः । अत्राऽऽगत्य महद्युद्धं करिष्यति मया सह ॥११॥
अतस्त्वया विमानानि क्रियन्तां बहुशः किल[2] । तुमुलयुद्धयोग्यानि[2क] बहुगाढानि साम्प्रतम् ॥१२॥

---

## अध्याय- २५

### देवता र दानवका बीच युद्धको तयारी

कार्तिक स्वामीले भन्नुभयो – विवाद गराउन सिपालु नारदमुनि पनि वीणा बजाउँदै अत्यन्त प्रसन्न भएर मीठो स्वरले गाउँदै स्वर्गमा जानुभयो । जताततै पुग्ने र झगडा मन पराउने नारदमुनिले त्यहाँ गएर इन्द्रलाई भएको वृत्तान्त बताउनुभयो ॥१–२॥

नारदले भने – हे देवराज इन्द्र ! तपाईं बडो ज्ञानी हुनुहुन्छ। देवताको हितका लागि म एउटा समाचार सुनाउँछु, सावधान भएर सुन्नुहोस् । स्वर्गमा शङ्कर हुनुहुन्न भन्ने कुरा थाहा पाएर तीस करोड अक्षौहिणी सेना लिई तपाईंसित लड्न हिरण्यकशिपु नाम गरेको दैत्य कवच पहिरिएर, रथमा चढेर, धेरै सेना साथमा लिएर युद्धका लागि आफ्नो क्षेत्रबाट निस्किएको छ। आफ्नो स्वर्गको कल्याणका निमित्त तपाईं सैन्यको तयारी गर्नुहोस्। ऊ भोलि वा पर्सि हेदहिर्दै युद्ध गर्न आइपुग्छ ॥४–६॥

कार्तिक स्वामीले भन्नुभयो – यो कुरा सुनेर केही डराउँदै इन्द्रले बृहस्पति आदि गरेका सबै देवताहरूलाई बोलाएर स्वर्गको रक्षाका निमित्त मधुर वचनले सम्झाए। त्यसपछि उनले विश्वकर्मालाई बडो सम्मानका साथ स्वर्गको रक्षाका निमित्त जो गर्नुपर्ने सो कामको तयारीका लागि निर्देशन दिए अर्थात् युद्धका सामग्री जुटाउन आदेश दिए॥७–९॥

इन्द्रले भने – हे बुद्धिमान् विश्वकर्मा ! तपाईं सबै कुरामा कुशल हुनुहुन्छ। यस ठाउँमा अब देवता र राक्षसको ठूलो युद्ध हुनेछ। हिरण्यकशिपु तीस करोड अक्षौहिणी सेना लिएर यहाँ आई मसित युद्ध गर्दैछ। यसैले तपाईंले ठूलो युद्धमा लड्न सक्ने अत्यन्त बलिया धेरैभन्दा धेरै विमानहरू बनाउनुपर्‍यो ॥१०–१२॥

---

१. तद्वार्तामवर्णयद्धि तत्क्षणात्, इति न.सं.पु.पाठः ।
२. बहुशो बहु, इति न.सं.पु.पाठः ।
२क. तुमुलयुद्धसह्यानि, इति न.सं.पु.पाठः ।

स्कन्द उवाच

निशम्यैतद्वचो धीमान् बहुमान्येन भाषितम्। इन्द्रेण च विधानज्ञो विश्वकर्मा प्रहर्षितः ॥१३॥
सर्वधातून्समादाय वरयानञ्च निर्ममे। सुवर्णरौप्यरत्नाढ्यं नानाविधानसुन्दरम् ॥१४॥
लौहचक्रं महागाढं विस्तीर्णं लोहकूबरम्। जाम्बूनदमयच्छत्रं सर्वरत्नविभूषितम् ॥१५॥
कांस्योद्भवमहानादकिङ्किणीजालमण्डितम्। पञ्चरङ्गपताकाभिर्युक्तं वज्रध्वजोत्तमम् ॥१६॥
खचितं रत्नजालैश्च गवाक्षैः[३] स्वर्णनिर्मितम्। ऐरावतसमायुक्तं विमानं तन्महाद्भुतम्।
विचित्ररत्नखचितं शस्त्रास्त्राद्यञ्च कामगम् ।१७॥
प्रबालमौक्तिकोपेतवितानसंयुतं मुने। विश्वकर्मा ददौ यानं शक्राय सङ्गरोज्ज्वलम् ॥१८॥
ततः शक्रः समालोक्य विमानं तन्महाद्भुतम्। प्रहर्षवान्ददौ तस्मै कण्ठाद्विमुच्य हारकम् ॥१९॥
सन्नह्य कवचेनेन्द्रो विमानमारुरोह तत्[४]। द्विजानभोजयद् दायान्दत्त्वा च भूरिशस्ततः ॥२०॥
आशीर्वादञ्च विप्राणां प्रतिगृह्य प्रणम्य च[५]। प्रहृष्टवान् ततः शक्रः सान्त्वयन्सारथिं पुनः ॥२१॥
ततो जाम्बूनदेनाऽशु निर्म्मितं यानमुत्तमम्। रौप्यवातायनोद्योतमीहाचेष्टमृगाननम् ॥२२॥
सुच्छत्रं ध्वजसंयुक्तं बहुशस्त्रास्त्रसङ्कुलम्। हस्तिभिर्वाहकैर्दिव्यं जयन्ताय ददौ पुनः ॥२३॥
सर्वतेजोमयं दिव्यं सुनिर्माय च विश्वकृत्। नानारत्नमयं यानं मणिज्योतिःसमुज्ज्वलम् ॥२४॥
सप्ताश्ववाहकं धीर रौद्रतेजोमहोज्ज्वलम्। रत्नच्छत्रसमायुक्तं ददौ सूर्य्याय साम्प्रतम् ॥२५॥

---

कार्तिक स्वामीले भन्नुभयो – सम्माननीय इन्द्रले भनेको यो कुरा सुनेर समय अनुसार कामगर्न सिपालु विश्वकर्मा अत्यन्त प्रसन्न भए। उनले सम्पूर्ण प्रकारका धातुहरू ल्याएर सुन, चाँदी र विभिन्न रत्नले युक्त भएको सुन्दर विमान निर्माण गरे। त्यस विमानका अत्यन्त बलिया फलामका पाङ्ग्रा र फलामकै जुवा थिए र त्यस विमानमा विभिन्न रत्नजडित सुनले बनेको छाता लगाइएको थियो ॥१३–१५॥

ठूलो आवाज गर्ने काँसका घुँघुराहरूले जडिएको र पाँच रङ्गका पताकाले युक्त भएको त्यो विमान वज्रमय ध्वजाले गर्दा सुन्दर देखिन्थ्यो। त्यो विमान विभिन्न रत्नहरूले खचित थियो, सुनले बनाएका आँखीझ्यालहरू थिए र ऐरावत हात्ती त्यसमा थियो। त्यसैले गर्दा त्यो विमान अत्यन्त आश्चर्यजनक देखिन्थ्यो। त्यहाँ विचित्र रत्नहरू थिए, विभिन्न शस्त्र–अस्त्रहरू राखिएका थिए र त्यो विमान आफ्नो इच्छा अनुसार जता लग्यो त्यतै जान्थ्यो। त्यहाँ मुगा र मोतीका पर्दा जडिएका थिए। मुगा, मोती आदि जडान गरिएका र चँदुवाले सुशोभित त्यो अति नै युद्धोपयोगी उज्वल विमान विश्वकर्माले इन्द्रलाई दिए ॥१६–१८॥

त्यसपछि इन्द्र त्यो आश्चर्यजनक विमानलाई देखेर धेरै खुसी भए र उनले घाँटीबाट हार निकालेर विश्वकर्मालाई दिए र इन्द्र कवच लगाएर विमानमा चढे। त्यसअघि उनले ब्राह्मणहरूलाई भोजन गराएर धेरै दान दिए। ब्राह्मणहरूबाट आशीर्वाद लिएर उनीहरूलाई नमस्कार गरेपछि उनले अत्यन्त प्रसन्न भई सारथिलाई आश्वासन दिए ॥१९–२१॥

त्यसपछि सुवर्णमय विमान बनाएर विश्वकर्माले जयन्तलाई दिए। यो विमान चाँदीका आँखीझ्याल भएको र बाघका मुखका चित्रहरूले सजिएको थियो। यसको राम्रो छाता थियो, धेरै शस्त्र–अस्त्रहरूले खचिखचाउ भएको यो दिव्य विमान हात्तीले तान्ने किसिमको थियो ॥२२–२३॥

विश्वकर्माले सबै तेजहरूले युक्त भएको, विभिन्न रत्नहरू जडिएको, मणिका कान्तिहरूले अत्यन्त उज्यालो देखिने, सात घोडाले तान्ने, कडा तेजले गर्दा अत्यन्त तेजस्वी र रत्नको छाता भएको विमान बनाएर सूर्यलाई तुरुन्तै दिए ॥२४–२५॥

---

३. गवाक्षम्, इति न.सं.पु.पाठः। ४. विमानमारुहद् ध्रुवम्, इति न.सं.पु.पाठः। ५. नमस्कृतः, इति न.सं.पु.पाठः।

राजतैर्बहुभिर्भूयो वज्रवैदूर्य्यभूषणैः । कृतवान् विश्वकर्माऽसौ सर्वयानोत्तमोत्तमम् ॥२६॥
रौप्याभञ्च तुषारांशुं सच्छत्रं हंसवाहकम् । कान्तकान्तिसमायुक्तं ददौ सोमाय विश्वकृत् ॥२७॥
ततस्ताम्रमयं यानं कृतवान् विश्वकृत्पुनः । खचितं सर्वरत्नैश्च[६] सुवर्णरौप्यभूषितम् ॥२८॥
रक्ततेजोमयं दिव्यं गवाक्षपुष्परागकम् । असह्यं सर्वलोकानां ददौ च जातवेदसे ॥२९॥
ततो लोहमयं दिव्यं विमानं सुदृढं पुनः । चकार विश्वकर्माऽसौ राजतस्वर्णभूषणैः ॥३०॥
पताकाध्वजसंयुक्तं भिन्नाञ्जनचयोपमम् । महिषवाहकं भीष्मं ददौ वैवस्वताय च[७] ॥३१॥
हिरण्यमयं महायानञ्चकार विश्वकृत्पुनः । ईहाचेष्टैश्च जन्तूनां मुखानाञ्च सुशोभनम् ॥३२॥
अष्टचक्रं महागाढं खरवाहं सुकूबरम् । नानारत्नसमाकीर्णं नैर्ऋताय ददौ ध्रुवम् ॥३३॥
सर्वरत्नमयं यानं त्वष्टा च कृतवान्पुनः । आननैर्जलजन्तूनां ईहाचेष्टासमाकुलम् ॥३४॥
जाम्बूनदमयैर्हृद्यैर्दिव्यास्त्रैः शतशो युतम् । किङ्किणीजालसंयुक्तं वरुणाय ददौ मुदा ॥३५॥
जातरूपमयं दिव्यं संस्कृत्य यानमुत्तमम् । कामगं रत्नसौन्दर्य्यं नानातेजोमयान्वितम् ॥३६॥
रौप्यकृत्रिमभूषाद्यमष्टचक्रं सुशोभनम् । पताकाध्वजसंयुक्तं वायवे प्रददौ पुनः ॥३७॥
जाम्बूनदेन संस्कृत्य राजतेन महोज्ज्वलम् । नानारत्नैश्च सङ्कीर्णञ्चाऽपरं पुष्पकं ततः ॥३८॥
कामगं बहुसौन्दर्य्यं किङ्किणीजालमण्डितम् । पताकाध्वजसोच्छ्रायं कुबेराय ददौ पुनः ॥३९॥

---

त्यसपछि विश्वकर्माले चाँदी नै चाँदीले बनेको, वज्रमणि र वैदूर्यमणिले सुशोभित, सम्पूर्ण यानभन्दा पनि उत्तम यान बनाए । यो यान चाँदीको टलक भएको, तुषाराको किरणले युक्त भएको, सुन्दर छाताले सुशोभित र हाँसद्वारा तानिने खालको थियो । विश्वकर्माले सुन्दर कान्तिले युक्त भएको यो यान चन्द्रमालाई दिए ॥२६–२७॥

चन्द्रमालाई यान दिएपछि विश्वकर्माले तामाको विमान बनाए । यो सुन, चाँदी आदि रत्नहरूले विभूषित थियो, यसको रातो तेज थियो, पुष्परागमणिका आँखीझ्यालहरू थिए, कुनै पनि प्राणीले यसलाई हेर्न सक्दैनथ्यो, यो यान उनले अग्निलाई दिए ॥२८–२९॥

त्यसपछि विश्वकर्माले फलामै फलामले बनेको शक्तिशाली विमान बनाए । त्यसमा चाँदी र सुन जडिएको थियो, ध्वजापताकाहरू फहराएका थिए, गाजलको थुप्रोजस्तो देखिने त्यो यान राँगाले तान्ने खालको र डरलाग्दो थियो । त्यो यान उनले यमलाई दिए ॥३०–३१॥

अनि विश्वकर्माले सुनको ठूलो यान बनाए । त्यस यानमा जनावरहरूका मुखका आकृतिहरू जडिएका थिए, आठ पाङ्ग्रा भएको, गधाले तान्ने खालको र सुन्दर जुवा भएको तथा नाना रत्नले युक्त त्यो रथ उनले नैर्ऋतलाई दिए ॥३२–३३॥

फेरि विश्वकर्माले सबै रत्नले जडिएको यान बनाए । त्यसमा जलजन्तुहरूका चेष्टा, इच्छा आदि प्रकट गर्ने अनुहारहरूका चित्रहरू जडिएका थिए । सुवर्णले बनेका, सुन्दर, दिव्य, अस्त्र–शस्त्रहरू त्यहाँ राखिएका थिए । घुँघुराहरूले युक्त भएको त्यो रथ खुसी भएर उनले वरुणलाई दिए ॥३४–३५॥

विश्वकर्माले सुवर्णमय, जता लग्यो त्यतै जाने, रत्न जडिएको हुँदा अत्यन्त सुन्दर देखिने, चहकिलो चाँदी र रत्नका पेटीले युक्त, आठ पाङ्ग्रा भएको, ध्वजा–पताकाले सुसज्जित सुन्दर यान बनाएर वायुलाई दिए । त्यसपछि विश्वकर्माले चाँदीले बनाएको उज्यालो यानलाई सुनको जलप लगाएर त्यसमा विभिन्न रत्नहरू जडी पुष्पक विमान बनाए । यो जता लग्यो त्यतै जाने, अत्यन्त राम्रो, घुँघुराहरूले सुशोभित र अग्ला ध्वजापताकाले गर्दा अति उच्च देखिने यो यान उनले कुबेरलाई दिए ॥३६–३९॥

---

६. खचितैः सर्वरत्नानाम्, इति न.सं.पु.पाठः ।
७. वैवस्वते मुने, इति न.सं.पु.पाठः ।

सर्वधातुमयं दिव्यं बहुरत्नसमाकुलम्। समारुरोह तद् यानं विश्वकर्मा स्वयं पुनः ॥४०॥
तत आज्ञापयदिन्द्रो देवानिति दिशो दश। रक्षध्वं विबुधा यूयं स्वपुरस्य यथाक्रमम् ॥४१॥
आदौ गुरुः स्वस्त्ययनञ्च कृत्वा प्रास्थापयत्तान्प्रसभं ततो वै।
सैन्यञ्च सन्नह्य च निर्ज्जगाम व्यूहं समास्थाय पुराद्रथैश्च ॥४२॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे देवासुरसैन्यनिर्याणं नाम पञ्चविंशोऽध्यायः ॥२५॥

---

सम्पूर्ण धातुहरू प्रयोग गरी बनाइएको र अनेकौं रत्नहरूले युक्त सुन्दर रथमा विश्वकर्मा आफैँ चढे ॥४०॥
त्यसपछि इन्द्रले दश दिशाका देवताहरूलाई आ–आफ्नो सहरको रक्षा गर भनेर क्रमैले अह्राए ॥४१॥
सुरुमा बृहस्पतिले स्वस्तिवाचन गरेर सबै देवताहरूलाई युद्धमा प्रस्थान गराए अनि सेनाहरू पनि कवच धारण गरेर व्यूह रचना गरी रथमा चढेर लड्नका लागि सहरबाट बाहिर निस्किए ॥४२॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गत हिमवत्खण्डको युद्धका लागि देवता र दैत्यहरूको तयारी नामक पच्चीसौँ अध्याय पूर्ण भयो।

# षड्विंशोऽध्यायः

देवासुरयुद्धे अग्निजयन्तयोः पराजयः

स्कन्द उवाच

तस्मिन्कालेऽसुराः सर्वे त्रिविष्टपं समाययुः। समारुह्य रथानश्वानुष्ट्रान्नागाँस्तथापरान् ॥१॥
ततो ददर्श दैत्येशो नगरीमिन्द्रपालिताम्। पारिजातमयेनाऽऽर्य्य[1] नन्दनेन समायुताम् ॥२॥
दिक्षु व्यूहं समास्थाय दिक्पालैश्च प्ररक्षिताम्। हिरण्यालयसम्पूर्णां हिरण्यद्रुमसङ्कुलाम् ॥३॥
आज्ञापयत्तदा दैत्यान् हिरण्यकशिपुर्मुदा। आहूय रथिनः सर्वान् यथायोग्यं यथाक्रमम् ॥४॥

हिरण्यकशिपुरुवाच

भो प्रह्लाद महाबाहो पूर्वतः सह युद्ध्यताम्। जयन्तेनामरावत्याः कोटिरथसमावृतः ॥५॥
अनुह्लाद तथा सार्द्धमाग्नेयीतः प्रयुध्यताम्। वह्निना च त्वया वत्स रथकोटिसमायुतः ॥६॥
संह्लादः सह कालेन दक्षिणतः प्रयुध्यताम्। आदाय रथकोटिञ्च ततस्तं नाऽवमानय ॥७॥
भो निकुम्भ समं वीर नैर्ऋतिन प्रयुध्यताम्। बलञ्च रथकोटीनामादाय सैन्यसंवृतः ॥८॥
भो कालक समं वीर वरुणेन प्रयुध्यताम्। रथकोटिं समादाय पश्चिमतो बलावृतः ॥९॥
बले भावांश्च वीरेण वायुना सह युध्यताम्। रथकोटिं समादाय बहुसैन्यसमावृतः ॥१०॥
नावमन्यस्व तं वायुं सर्वसत्त्वभयप्रदम्। त्वञ्च वत्स महावीरः सर्वोन्नतपराक्रमः ॥११॥
विप्रचित्ते भवान् सार्द्धं कुबेरेण प्रयुध्यताम्। रथकोटिं समादाय चोत्तरस्यां बलैर्युतः ॥१२॥
मय तेन समं वीर युध्यतां विश्वकर्म्मणा। रथकोटिं समादाय बहुसैन्यसमावृतः ॥१३॥
हिरण्याक्ष वयञ्चात्र तिष्ठामस्तद्दिदृक्षया[2]। यदा द्रवन्ति सैन्यानि योत्स्यामश्च तदा वयम् ॥१४॥

---

अध्याय- २६

देवासुर सङ्ग्राममा अग्नि र जयन्तको पराजय एवं पलायन

कार्तिक स्वामीले भन्नुभयो – त्यसै समयमा सबै राक्षसहरू रथ, घोडा, ऊँट, हात्ती र अन्य वाहनहरूमा चढेर स्वर्गमा आइपुगे। त्यसपछि दैत्यराज हिरण्यकशिपुले पारिजात र नन्दन बगैंचाले सुशोभित इन्द्रको राज्य अमरावती देख्यो। दिक्पालहरूले चारैतिरबाट व्यूह बनाएर सुनैसुनका घर र सुवर्णमय वृक्षले सुशोभित त्यस अमरावती पुरीको रक्षा गरेका थिए। त्यसपछि प्रसन्नतापूर्वक हिरण्यकशिपुले रथमा बसेका दैत्यहरूलाई क्रमैले बोलाएर यथोचित निर्देशन दियो ॥४॥

हिरण्यकशिपुले भन्यो – हे प्रह्लाद ! हे महाबाहु ! करोडौं रथ साथमा लिएर तिमीहरू अमरावतीको पूर्वपट्टिबाट जयन्तका साथ युद्ध गर। हे अनुह्लाद ! तिमी करोडौं रथ साथमा लिएरआग्नेय दिशातिरबाट अग्निसँग युद्ध गर। हे संह्लाद ! तिमी करोडौं रथ र धेरै सेना साथमा लिएर दक्षिणपट्टिबाट यमराजसँग लड। हे निकुम्भ ! तिमी करोडौं रथले युक्त भएको सेना लिएर नैर्ऋत्य दिशातर्फबाट नैर्ऋतसँग लड। हे कालनेमि वीर ! तिमी करोडौं रथ र सैन्य साथमा लिएर पश्चिमपट्टिबाट वरुणसँग लड ॥५-९॥

हे वीर बलि ! तिमी करोडौं रथ र धेरै सेना लिएर वायव्य दिशाबाट वीर वायुसित युद्ध गर। हे बाबु ! सबै भन्दा पराक्रमशाली तिमी पनि महावीर छौ त्यसैले सम्पूर्ण प्राणीलाई नै अतिशय भयभीत गराउने ती वायुलाई तिमी कमजोर नठान। हे विप्रचित्ति ! तिमी करोडौं रथ र सैन्य लिएर उत्तरदिशामा कुबेरसित युद्ध गर ॥१०-१२॥

हे वीर मय ! तिमी करोडौं रथ र धेरै सेना लिएर विश्वकर्मासित लडाईं गर। हे हिरण्याक्ष ! हामी युद्ध हेरेर यस ठाउँमा बसौं। जब सैन्यहरू थाक्छन् र भाग्छन् त्यसपछि हामी युद्ध गरौंला ॥१३-१४॥

---

१. पारिजातोद्भवेनार्य, इति न.सं.पु.पाठः। २ तत्प्रदर्शयन्, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

ततः समाययुर्दैत्या युद्धाय साम्प्रतं मुने। आदाय हि प्रभोराज्ञां नमन्तो दानवेश्वरम्[३] ॥१५॥
समागत्य ततो दैत्याः स्वे स्वे स्थाने मुदान्विताः। नादञ्चक्रुर्महाभीष्मं सर्वसत्त्वभयङ्करम् ॥१६॥
देवाश्चाऽपि तदा विप्र नादञ्चक्रुर्महाद्भुतम्। सन्दृश्य दनुजान् सर्वान् सिंहनादं ततः परम् ॥१७॥
प्रादुरासीत्ततो नादः सैन्ययोरुभयोस्तदा। युगान्ते च तथा धीर सर्वसत्त्वोग्रभीषणः ॥१८॥
भेरीणां पटहानाञ्च मृदङ्गजलजन्मिनाम्। ढक्कानां दुन्दुभीनाञ्च काँस्यानाञ्च तथा पुनः ॥१९॥
हस्तिनां वाजिनां धीमान् ह्रेषितं हि तथैव च। ज्याशब्दो रथचक्राणां वीराणां सङ्कुलोद्भवम् ॥२०॥
ततस्ते युयुधुर्दैत्या देवैः सार्द्धं समन्ततः। पदातिनो महावीरा विबुधैश्च तथाविधैः ॥२१॥
जघ्नुर्मिथः सुरा दैत्याः शरैः खड्गैः परश्वधैः। गदाभिः पट्टिशैः पाशैः परिघैस्तोमरैस्तथा ॥२२॥
ततः पदातयः[४] स्वर्गे पेतुस्तत्र समन्ततः। उभयोः सैन्ययोर्धीमन् कुठारैरिव शाखिनः ॥२३॥
पुरस्य प्रान्तरं रेजे रुधिरौघैः क्षतोद्भवैः। समाच्छन्नस्तदा भीष्म एकार्णव इव क्षये ॥२४॥
धराधरा इवाच्छन्नाः किञ्चिच्छेषा महोर्मिभिः। विग्रहाः पतितानाञ्च रुधिरौघैस्तथाविधाः ॥२५॥
ततो जयन्त आदौ च स्वस्य नामाङ्किताशुगैः। अवाकिरच्छरासारान् दैत्यसैन्योपरि ध्रुवम् ॥२६॥
प्रह्लादोऽपि तदा विप्र देवसैन्यं प्रमर्दयन्। शरजालैर्महातीक्ष्णैः स्वनामाङ्कैः समन्ततः ॥२७॥
जयन्तोऽपि रथेनाऽऽशु मध्ये सुरद्विषां तदा। आदाय कार्मुकं क्रोधादभिदुद्राव सङ्गरे ॥२८॥

---

कार्तिक स्वामीले भन्नुभयो – हिरण्यकशिपुको निर्देशन अनुसार ती दैत्यहरू उसलाई नमस्कार गरेर युद्धका लागि त्यहाँ आए। त्यसपछि अत्यन्त प्रसन्न हुँदै ती दैत्यहरूले आ–आफ्नो स्थानमा पुगेर सम्पूर्ण प्राणीहरूमा त्रास पैदा गर्ने किसिमको भयानक आवाज निकाले। हे अगस्त्य मुनि ! त्यसपछि देवताहरूले पनि ती राक्षसहरूलाई देखेर आश्चर्यजनक आवाज निकाले। उनीहरूले सिंहको जस्तो गर्जन गरे ॥१५–१७॥

त्यसपछि दुबैथरी सेनाहरूको सबै प्राणीहरूमा डर उत्पन्न गर्ने , प्रलयकालीन शब्दजस्तै शब्द निस्कियो। त्यसमा दमाहा, कर्णाल, मादल, ढक्का, झ्याली, हात्ती र घोडाका शब्द, जय–जयशब्द, रथका पाङ्ग्रा र वीरहरूले बोलेको ध्वनि मिसिएको थियो ॥१८–२०॥

त्यसपछि ती दैत्यहरू आफ्नो समान स्तर भएका देवताहरूसित लड्न लागे। पदाति दैत्यहरू त्यस्तै पदाति देवताहरूसित लडे। युद्धमा ती देवता तथा दैत्यहरूले बाण, तरवार, बञ्चरो, गदा, पासो, तोप र तोमरले एकआपसमा हानाहान गरे। त्यसपछि दुबैथरी पदाति सैन्यहरू बञ्चराले ढालेका रुखहरू जस्तै भएर स्वर्गमा चारैतिर पछारिए। त्यसबेला प्रलयकालीन डरलाग्दो समुद्रजस्तै घाउबाट निक्लिएका रगतका भलले सहरको सबै भाग ढाक्यो। त्यस समयमा ठूलो तरङ्गले पहाडहरूलाई ढाकेजस्तै देवता र राक्षसहरूका शरीर रगतको भेलले ढाकिएको थिए। त्यसै बेलामा सर्वप्रथम जयन्तले आफ्नो नामले अङ्कित धनुषहरूद्वारा दैत्यको सेनामाथि बाणको वर्षा गरे ॥२१–२६॥

हे अगस्त्य मुनि ! त्यसपछि प्रह्लादले देवताका सेनालाई तितरवितर पार्दै आफ्नो नामले अङ्कित भएका तीखा बाणहरू वर्साए। जयन्त पनि हत्त न पत्त धनुष हातमा लिएर रीसले देवताहरूको बीचमा लडाइँ गर्न हुत्तिए। उनले तीखा बाणहरू चारैतिर हिर्काए, पैदल र रथारोही सेनालाई पीडित तुल्याउँदै बाणहरूको वर्षा गरे ॥२७–२८॥

---

३. वन्दमानासुरेश्वरम्, इति न.सं.पु.पाठः। ४. पदातिनः, इति न.सं.पु.पाठः।

जघान च शरैस्तीक्ष्णै रथिनो हि समन्ततः। ववर्ष शरवर्षाणि पदातीन् रथिनो हयान् ॥२९॥
स वै शिरांसि चिच्छेद भल्लैश्च क्षुरनेमिभिः[५]। पदातीनां रथिनाञ्च वीराणां समयोद्धनाम्[५क] ॥३०॥
आकर्णञ्च समुद्धृत्य सशरञ्च शरासनम्। लक्ष्यीकृत्य च हृत्स्थानं प्रह्लादस्य जघान सः ॥३१॥
दशभिर्दशभिर्बाणैर्वाहांश्च रथसारथीन्। पञ्चभिः पञ्चभिः सर्वान् पदातींश्च जघान सः ॥३२॥
ततो ध्वजांश्चकर्त्ताऽऽशु रथानां पुरतः स्थितान्। इतस्ततः समुत्प्रेक्ष्य जघान च भृशं शरैः ॥३३॥
प्रह्लादो न चचाराजावर्द्यमानो भृशं शरैः। क्षणं व्यथां समुत्तीर्थ नागेन्द्र इव चाऽङ्कुशैः ॥३४॥
ततः सेनां विदीर्णां तां प्रह्लादोऽपि महाबली। ददर्शाऽऽयोधनं त्यक्त्वा पलायितां भयावहाम् ॥३५॥
जयन्तञ्चाऽभिसम्प्रेक्ष्य सैन्यमध्ये व्यवस्थितम्। चूर्णयन्तं स्वकं सैन्यं क्रोधेन मूर्च्छितोऽसुरः ॥३६॥
आहूय सर्वसैन्यानि वचनमिदमब्रवीत्[६]। भो भो दैत्या महावीरा न सिद्धिः स्यात्पलायनात्[७] ॥३७॥
दैत्यपतेश्च कार्य्यं हि युध्यतां सह वै मया। अस्मद्धर्म्मं पुरस्कृत्य लभ्यतां सुयशो यतः ॥३८॥

स्कन्द उवाच

ततो वचो निशम्याऽऽशु प्रह्लादस्य च दानवाः। हर्षवन्तश्च युद्धाय यत्रेन्द्रजो ययुः पुनः ॥३९॥
आदाय कार्मुकान् वीरा युगपदभिदुद्रुवुः। ससर्ज शरवर्षाणि चाऽन्धीभूता दिशो दश ॥४०॥
अर्दयन्ति स्म गीर्वाणान् शरजालैस्तथायुधैः। प्रहारैर्बहुशस्त्रास्त्रैः परिघैः क्षेपणैस्तदा ॥४१॥
ततो विबुधसेना सा शस्त्रास्त्रैः[८] पीडिताऽभवत्। हेमन्तस्य तमिस्रायां गोयूतिरिव वृष्टिभिः ॥४२॥
प्रह्लादो हि महाक्रोधादादाय सशरन्धनुः। आकर्णञ्च समुद्धृत्य सन्दश्यौष्ठपुटं भृशम् ॥४३॥
विव्याध दशभिर्बाणैर्लक्ष्यीकृत्य स्तनान्तरम्। जयन्तस्य च हृद्देशे समुत्प्लुत्य ननाद च ॥४४॥

---

उनले समान किसिमका पैदल तथा रथारोही वीर सेनाका शिरलाई तरवार र भालाले काटे। उनले कानसम्म पुग्ने गरी धनुष खैँचिएर प्रह्लादको वक्षस्थलमा ताकी बाणप्रहार गरे। उनले दश-दश बाणले घोडा, हात्ती आदि वाहन, रथ, सारथि र पाँच-पाँच बाणले सबै पैदल सेनामाथि प्रहार गरे। त्यसपछि उनले अगाडि रहेका रथहरूका ध्वजाहरू काटे, यताउति हेरेर बेस्सरी बाणहरू प्रहार गरे ॥२९-३३॥

हात्तीले अङ्कुशको पीडालाई खप्न नसकेझैँ प्रह्लाद पनि जयन्तको बाणको प्रहारको पीडालाई सहन नसकी युद्धमा बढ्न सकेनन्। हात्तीले पीडा सहेर उठेजस्तै उठेर हेर्दा महाबली प्रह्लादले भयानक युद्ध छोडेर भाग्न लागेको आफ्नो सेनालाई देखे। सेनाहरूको बीचमा रहेर आफ्ना सेनाहरू ध्वस्त पारिरहेको जयन्तलाई देखेर प्रह्लाद रीसले मूर्छित भए। त्यसपछि उनले सबै दैत्यहरूलाई बोलाएर भने - हे महावीर दैत्य हो ! पलायनबाट दैत्यका राजा हिरण्यकशिपुको कार्यपूर्ण हुँदैन, त्यसैले मसँगसँगै देवताहरूसित लड र हाम्रो धर्मलाई अगाडि सारेर कीर्ति प्राप्त गर ॥३४-३८॥

कार्तिक स्वामीले भन्नुभयो - प्रह्लादको वचन सुनेर खुसी हुँदै सम्पूर्ण राक्षसहरू जहाँ जयन्त थिए त्यसै ठाउँमा फेरि युद्ध गर्न गए। त्यसपछि ती राक्षसवीरहरूले धनुष लिएर एकैचोटि आक्रमण गरे, बाणहरूको वृष्टि गरे, दशै दिशा अन्धकारमय भयो। उनीहरूले बाण, हतियार, विभिन्न शस्त्र-अस्त्र, गदा, क्षेप्यास्त्र आदिको प्रहारद्वारा देवताहरूलाई पीडित तुल्याए। त्यसपछि हेमन्तको रातमा भएको वर्षाले गाईको वथानलाई पीडित बनाएझैँ तिनीहरूका शस्त्र-अस्त्रले देवताका सेनाहरूलाई पीडित तुल्यायो। प्रह्लादले रिसाएर ओठ टोक्दै कानसम्म पुग्ने गरी धनुष खैँचिएर जयन्तको छातीमा दशवटा बाणले हिर्काए र गर्जिए। फेरि दश-दशवटा बाणले जयन्तको दुई स्तनको बीचमा हिर्काए ॥३९-४४॥

---

५. क्षुरनेमैस्ततो भल्लैश्चिच्छेद च शिरांसि वै, इति न.सं.पु.पाठः। ५क. वीराणां समयोद्धानां रथिनाञ्च पदातिनाम्, इति न.सं.पु.पाठः।
६. इदं वचनमब्रवीत्, इति न.सं.पु.पाठः। ७. पलायते, इति न.सं.पु.पाठः। ८. तच्छस्त्रास्त्रैः, इति न.सं.पु.पाठः।

दशभिर्दशभिर्भूयो विव्याध च ननाद च। रथिनः[९] सारथीनश्वान्पदातींश्च द्विपांस्तथा ॥४५॥
देवध्वजानि चिच्छेद बाणै रथस्थितानि च। वाहनानि विमानानां पदानि च करांस्तथा ॥४६॥
ततोऽब्रवीच्च सूताय रथं सूत प्रवाहय। यत्र यत्र च देवानां व्यूहस्तिष्ठति तत्र च ॥४७॥
भूयो देवान्पदातींश्च ह्यर्दयन् रथनेमिभिः। जघान च शरैस्तीक्ष्णैर्दर्शयंश्च दिशो दश ॥४८॥
ततस्ता दुद्रुवुः सेना अर्द्यमानाः पुरान्तरम्। प्रह्लादं क्रोधिनं प्रेक्ष्य मृगयूथा हरिं यथा ॥४९॥
ततो वह्नी रथेनाऽऽजौ गत्वा मध्ये सुरद्विषाम्। ससर्ज्ज शरजालानि युगान्ते वृष्टिभिर्यथा ॥५०॥
आकर्णञ्च समुद्धृत्य लक्षितवाँस्तनान्तरम्। निचखान समुत्प्लुत्य जातवेदा ननाद च ॥५१॥
सारथिं दशभिर्भित्त्वा विंशतिभिश्च वाहनान्। ध्वजञ्चिच्छेद भूयोऽसौ छत्रञ्चैव त्रिभिस्त्रिभिः ॥५२॥
पञ्चभिश्च शरैस्तीक्ष्णैश्चकर्त्त तद्धनुः शुभम्। ज्याञ्च शराँस्तथा नूनमनुह्लादसमुद्धृतान् ॥५३॥
अपरान् रथिनो वह्निर्दशभिर्दशभिर्मुने। सारथिं पञ्चभिर्भित्त्वा निचखान च हृत्स्थले ॥५४॥
षड्भिः षड्भिः पदातींश्च जघान चाऽविलम्बितम्। समालोक्य पुरो योद्धृन् दशभिर्दशभिस्तथा ॥५५॥
असह्यतेजसो वह्नेः पुरःस्थातुं सुरद्विषः। अर्दिता बाणजालैस्ते न शेकू रथसंस्थिताः ॥५६॥
हित्वा चाऽऽयोधनं भीता वह्निवर्च्चःप्रदाहिताः। तच्छरैश्चूर्णिता देहा दुद्रुवुश्च दिशो दश ॥५७॥
रथिनो ध्वजिनो दैत्याः पदातयस्तथा मुने। प्रकम्पितास्तमालोक्य मत्तद्विपं मृगा इव ॥५८॥
अनुह्लादस्तदा विप्र न चचाल महाहवे। हन्यमानोऽपि गात्रेषु तच्छरैश्च पृथक् पृथक् ॥५९॥
समुत्तीर्णः क्षणं पीडां ददर्श स पलायितान्। युद्धं त्यक्त्वा स्वकं सैन्यं चतुरङ्गबलं तदा ॥६०॥
त्रस्यमानां महासेनां वह्निशरैर्विदारितान्[१०]। आह्वयच्च समालोक्य हस्तक्षेपैरनुह्लदः ॥६१॥

---

त्यसपछि उनले दश-दशवटा बाण रथी, सारथि, पैदलसेना तथा हात्तीहरूलाई लक्ष्य गरेर हाने र ठूलो गर्जना गरे। उनले बाणहरूद्वारा देवताका ध्वजा, वाहन, विमान, गोडा र हात काटे। जहाँ-जहाँ देवताका समूह छन्, छिट्टै छिट्टै रथ त्यतैतिर लैजाऊ भनेर प्रह्लादले सारथिलाई भने। फेरि उनले पैदल हिँड्ने देवताहरूलाई रथका पाङ्ग्राले पीडित तुल्याउँदै दशै दिशातिर हेरी उनीहरूमाथि तीखा बाणहरू प्रहार गरे। त्यसपछि सिंहलाई देखेर मृगको बथान भागेझैँ रिसाएका प्रह्लादलाई देखेर पीडित देवताका सेनाहरू सहरभित्र भागे ॥४५-४९॥

त्यसपछि अग्निले लडाईँमा रथमा चढेर दैत्यको सेनाको बीचमा पसी प्रलयको अन्त्यमा पानीको वर्षा भएझैँ बाणहरूको वर्षा गरे। अग्निले कानसम्म पुग्ने गरी धनुष खैँची अनुह्लादको हृदयमा बाणहरू छोडे र गर्जना गरे। दशवटा बाणले उनको सारथिलाई र बीसवटा बाणले वाहनलाई हिर्काए। त्यसैगरी तीन-तीनवटा बाणले ध्वजा र छातालाई काटिदिए। उनले तीखा पाँचवटा बाण छोडेर अनुह्लादका धनुष, ताँदो र बाणलाई पनि काटे ॥५०-५३॥

अग्निले रथारोही सैन्यहरूलाई दश-दशवटा बाणले हिर्काए, सारथिको हृदयमा पाँचवटा बाण प्रहार गरे। उनले छ-छवटा बाण तुरुन्तै पैदल सेनामाथि प्रहार गरे र अघिल्तिर योद्धाहरूलाई देखेर उनीहरूमाथि दश-दशवटा बाण हिर्काए। अत्यन्त तेजस्वी अग्निको अगाडि दैत्यहरू टिक्न सकेनन्, रथमा बस्ने दैत्यसैन्यहरू पनि उनका बाणहरूद्वारा पीडित भएर युद्धमा अडिन सकेनन्। अग्निको तेजले डढेका दैत्यहरू उनका बाणद्वारा क्षत-विक्षत शरीर भएर डराउँदै दशै दिशातिर भागे। मत्तहात्तीलाई देखेर मृगहरू काँपेझैँ अग्निलाई देखेर रथारोही, ध्वजा लिने र पैदल हिँड्ने दैत्यहरू काँप्न थाले ॥५४-५८॥

हे अगस्त्य मुनि ! अग्निका बाणहरूबाट पीडित भए पनि अनुह्लाद त्यस महायुद्धलाई छोडेर यताउति लागेन। बाणबाट पैदा भएको पीडालाई पार गरेर बिउँझिएझैँ अनुह्लादले युद्ध छोडेर भाग्न लागेको आफ्नो अक्षौहिणी सेनालाई देख्यो। अग्निका बाणले विदीर्ण भएर डराइरहेको आफ्ना सेनालाई उसले हातले इसारा गरेर बोलायो ॥५९-६१॥

---

९. रथिंश्च, इति न.सं.पु.पाठः। १०. वह्निशरैर्विदीर्णिताम्, इति न.सं.पु.पाठः।

उवाच वचनं तेभ्यश्चाऽनुह्रादो महारथः । रे रे दैत्या महावीरा निवर्तध्वं पलायनात् ॥६२॥
दैत्यवंशोद्भवा वीरा भवेयुरघलाञ्छिताः[११] । आयोधनञ्च सन्त्यज्य यूयं कथं पलायिताः ॥६३॥
अस्मत्संज्ञा महावीरास्त्रिषु लोकेषु विश्रुताः । दैत्यधर्मं पुरस्कृत्य युध्यध्वं वै मया सह ॥६४॥
निशम्यैतद्वचो वीरा अनुह्रादस्य साम्प्रतम् । सन्निवर्त्त्य ययुर्द्धीमन् यत्र स्थितोऽसुरप्रभुः ॥६५॥
भूयो युयुधिरे दैत्याः[१२] परस्परं महाहवे । अभिद्रुत्य मिथः सैन्यं न जानन्ति स्वकं परम् ॥६६॥
अनुह्रादस्ततो विप्र क्रोधेन च प्रमूर्च्छितः । आदाय सशरञ्चापं सूतायोवाच सत्वरम् ॥६७॥
भो सूत त्वं महाबाहो तूर्णं वाहान्प्रचोदय । रथं नय ध्रुवं तत्र यत्र स्थितो विभावसुः ॥६८॥
सूतोऽप्यचोदयद्वाहानाज्ञामादाय सत्वरम् । यत्र वह्निरथो विप्र नीतवान् तद्रथं तदा ॥६९॥
आकर्णञ्च समुद्धृत्य सशरं च धनुः शुभम् । ओष्ठपुटञ्च सन्दश्य चेषदानमितस्तनुः ॥७०॥
अनुह्रादस्ततः क्रोधात्समुद्दिश्य स्तनान्तरम् । वक्षसि निचखानाऽऽशुच्छ्द्मगान् जातवेदसः ॥७१॥
दश दश तथा बाणान् हस्तयोः पादयोः पुनः । दश चैव शिरोदेशे चखान जातवेदसः ॥७२॥
पञ्चभिस्तीक्ष्णबाणैश्च द्वाभ्यां तूणशरान्धनुः । चिच्छेद च ध्वजं सूतं वाहान् बिभेद पञ्चभिः ॥७३॥
वारुणास्त्रं समादाय तस्योपरि ववर्ष सः । ततो वह्निर्निष्प्रयत्नो वीरोऽप्यभूद् घटोद्भव ॥७४॥
दशभिर्दशभिर्बाणैर्जघान रथिनोऽपरान् । षड्भिः षड्भिः पदातींश्च चतुर्भिश्चैव सारथीन् ॥७५॥
त्रिंशद्भिर्विंशतीभिश्च हस्तिनो वाजिनस्तथा । जघान लघुहस्तेन समुत्प्लुत्य ननाद च ॥७६॥

---

त्यसपछि महारथी अनुह्रादले तिनीहरूसँग भन्यो – हे वीर दैत्य हो ! तिमीहरू नभाग । दैत्यको कुलमा उत्पन्न भएका वीरहरू पनि कुकीर्तिको अभिलाषी हुन्छन् र ? त्यसकारण युद्ध छोडेर तिमीहरू किन भागिरहेका छौ ? । हे महावीर हो ! हाम्रो नाम तीनै लोकमा फैलिएको छ । त्यसैले दैत्यधर्मलाई अगाडि सारेर म सँगसँगै देवताहरूसित लड ॥६२–६४॥

हे बुद्धिमान् अगस्त्य मुनि ! अनुह्रादको यो भनाइ सुनेर दैत्यहरू फर्किए र जहाँ उनीहरूको अधिपति बसेको थियो, त्यसै ठाउँमा गए । त्यसपछि ती दैत्यहरू जम्मा भएर त्यस महायुद्धमा एक–अर्कासित लड्न थाले । उनीहरूले अरूका वा आफ्ना सैन्य हुन् भन्ने पनि थाहा पाएनन् । हे अगस्त्य मुनि ! त्यसपछि हत्त न पत्त बाण चढाएको धनु लिएर अनुह्रादले अत्यन्त क्रुद्ध हुँदै सारथिसँग भन्यो – हे महाबाहु सारथि ! वाहनहरू तुरुन्त हाँक, जहाँ अग्नि बसेका छन् त्यतैतिर रथ लैजाऊ ॥६५–६८॥

हे अगस्त्य मुनि ! सारथिले पनि अनुह्रादको निर्देशनबमोजिम जहाँ अग्नि बसेका थिए, तत्काल रथ त्यतैतिर लग्यो । रिसाएर ओठ टेक्दै शरीरको भाग केही निहुराई अनुह्रादले बाण चढाएको धनुष कानसम्म खैंचिएर अग्निको हृदयमा ताकेर बाण प्रहार गऱ्यो । त्यसपछि उसले अग्निको हात, गोडा र टाउकामा दश–दशवटा बाण हान्यो । उसले पाँचवटा तीखा बाणले दुईवटा बाणका ठोक्रा र धनुषलाई काटिदियो । पाँचवटा बाणले ध्वजा, सारथि र वाहनलाई ध्वस्त पाऱ्यो ॥६९–७३॥

हे अगस्त्य मुनि ! त्यसपछि त्यस राक्षसले अग्निमाथि वारुणास्त्र वर्षा गऱ्यो । पराक्रमी हुँदा पनि अग्निको प्रयासले काम दिएन । त्यस राक्षसले उफ्रिएर दश–दशवटा बाणले अरू रथीहरूलाई, छ–छवटा बाणले पैदल सेनालाई, चारवटा बाणले सारथिलाई, तीसवटा बाणले हात्तीलाई तथा बीसवटा बाणले घोडालाई छिटो–छिटो गरी हिर्कायो र ठूलो गर्जन गऱ्यो ॥७४–७६॥

---

११. भवेयुरघवाञ्छिनः, इति न.सं.पु.पाठः ।
१२. भूयस्ते युयुधुर्दैत्याः, इति न.सं.पु.पाठः ।

ततोऽपोवाहयद्यानं नगरं प्रति सारथिः । दृष्ट्वा यातमपोवाहं तत्सेनाश्चाऽभिदुद्रुवुः ॥७७॥

ततश्च शक्राय न्यवेदयत्तां जनश्च वार्त्तां समितेर्जवेन ।
जयन्तवैश्वानरयोर्हि याने पुर्यामपोवाहकृतौ च सूतौ ॥७८॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे देवासुरयुद्धे जयन्ताग्न्योर्य्यानादपोवाहो नाम षड्विंशोऽध्यायः ॥२६॥

---

त्यसपछि अग्निको सारथिले रथ सहरतिर लगे । सारथि सहरतर्फ फर्केको देखेर सेना डराएर भागे । त्यसपछि दूतहरू गएर दुबै सारथिहरू जयन्त र अग्निको रथ लिएर सहरतर्फ फर्किएको वृत्तान्त इन्द्रसँग निवेदन गरे ॥७७-७८॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गत हिमवत्खण्डको देवासुर युद्धमा जयन्त र अग्निको पलायननामक छब्बीसौँ अध्याय पूर्ण भयो ।

# सप्तविंशतितमोऽध्यायः

## देवासुरयुद्धे कालनैर्ऋतयोः पलायनम्

### स्कन्द उवाच

भूयो युद्धं महद्वृत्तं[1] तुमुलं लोमहर्षणम्। शस्त्रास्त्रैः क्षेपणैर्विप्र युगान्त इव भीषणम् ॥१॥
तयोर्युद्धं महज्जातं[2] चित्रं संह्रादकालयोः। शस्त्रास्त्रवृष्टिभिर्भीष्मं तमोभूतोऽपि वासरः ॥२॥
अभूत् सुतुमुलं युद्धं कालसंह्रादयोस्तयोः। सैन्यानां भीषणं विप्र परस्परवधैषिणोः ॥३॥
जाम्बूनदमयैः पुङ्खैः प्रक्षेपैः समितस्ततः। बहुकोटिशरैस्तीक्ष्णैः शिलाधौतैस्तयोस्तदा ॥४॥
तौ रथौ शुशुभाते हि युद्धमध्ये गतौ भृशम्। हिरण्यशिखरौ रात्रौ खद्योतैरिव संयुतौ ॥५॥
ततोऽवोचच्च सूताय प्रयाणार्थं रथस्य च। कालः क्षिप्रञ्च भो सूत रथं नय तदन्तिकम् ॥६॥
हनिष्यामि शरैस्तीक्ष्णैः संह्रादस्य सुरद्विषः। कालस्य वचनं श्रुत्वा सारथिः प्राणयद्रथम् ॥७॥
सारथिश्च ततो धीर रथवाहाश्च सत्वरम्। संह्रादश्च स्थितो यत्र यत्नेन च प्रचोदयन् ॥८॥
अमर्षपूरितः काल आकर्णमुद्धृतैः शरैः। विंशत्या सञ्जघानाशु[3] संह्रादस्य च वक्षसि ॥९॥
पञ्चभिश्च ततो भूयः संह्रादस्य जघान च। हस्तपादललाटाँश्च समुद्दिश्य च मर्म्मसु ॥१०॥
दशभिर्दशभिर्वाहान् सूतञ्च दशभिस्तथा। ध्वजञ्चापं शराँस्तूणाँस्त्रिभिस्त्रिभिस्ततोऽच्छिनत् ॥११॥
षड्भिः षड्भिः शरैस्तीक्ष्णैर्विव्याध रथिनो भृशम्। पञ्चभिः पञ्चभिर्भूयः पदातींश्च तथापरान् ॥१२॥
द्वाभ्यां द्वाभ्यां तथा केतूँश्चिच्छेद सपताकिनः। वाहिनीनां पुरोगाँश्च रथानाञ्च पुरःस्थितान् ॥१३॥

---

## अध्याय- २७

## देवासुरयुद्धमा नैर्ऋति र कालको पलायन

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! संह्राद र कालको बीचमा आडै जिरिङ्ग गराउने किसिमको घोर युद्ध भयो। शस्त्र–अस्त्र फ्याँकाफ्याँक भएको त्यो युद्ध युगान्तरहुने प्रलयजस्तै भीषण थियो। शस्त्रास्त्रको वर्षणले गर्दा संह्राद र कालको युद्ध अति आश्चर्यजनक र भीषण भयो। त्यसबेला दिन पनि रातजस्तै बन्यो ॥१–२॥

हे अगस्त्य मुनि ! परस्पर मार्न चाहने काल र संह्रादका सेनाहरूबीच कोलाहलमय डरलाग्दो युद्ध भयो। सुवर्णमय सफा पङ्ख भएका करोडौं बाणको प्रक्षेपणले गर्दा युद्ध अत्यन्त भीषण थियो। युद्धको बीचमा पुगेका ती दुई रथी जुनकिरीद्वारा सुशोभित सुनका टकुराजस्तै देखिन्थे ॥३–५॥

त्यसपछि कालले सारथिलाई रथ हाँक्न लगाउँदै भने – हे सारथि ! तुरुन्त रथ संह्रादको नजिकै लैजाऊ। म राक्षस संह्रादलाई बाणले मार्छु। कालको यो भनाइ सुनेर सारथिले रथ हाँके। हे अगस्त्य मुनि ! त्यसपछि सारथिले जहाँ संह्राद थियो, त्यतैतिर सचेत भएर घोडा हाँक्यो। क्रुद्ध कालले कानसम्म पुग्ने गरी ताँदो खैँचिएर संह्रादको छातीमा बीसवटा बाण प्रहार गरे। त्यसपछि फेरि उनले संह्रादको हात, पाउ, निधार र मर्मस्थललाई ताकेर बाण हाने ॥६–१०॥

दश–दशवटा बाणले वाहन र दशवटै बाणले सारथिलाई हिर्काए। तीन–तीन बाणले ध्वजा, धनुष र ठोक्रोलाई पनि काटे। छ–छवटा तीखा बाणले रथारोही सैन्य र पाँच–पाँचवटा बाणले अरू पैदलयात्री सेनालाई प्रहार गरे। कालले दुई–दुई बाणले सेना र रथको अगाडि लागेका झण्डावालको झण्डा काटे ॥६–१३॥

---

१. महानासीत्, इति न.सं.पु.पाठः।
२. महानासीत्, इति न.सं.पु.पाठः।
३. विंशतिभिर्जघानाशु, इति न.सं.पु.पाठः।

भल्लैश्चिच्छेद तान् कालो दनुजानां शिरांसि च। युध्यमानपदातीनामयुतानि सकृत्सकृत् ॥१४॥
भूयो जघान दैत्यांश्च युध्यमानान् पुनः पुनः। कोटिकोटिसहस्रैश्च प्रासैश्च तोमरैस्तथा ॥१५॥
भेजिरे ता दिशः सर्वा दैत्यसेनास्ततो मुने। कालशरैः समाकीर्णाः कम्पमाना मुहुर्मुहुः ॥१६॥
संह्लादश्च महावीरः क्रोधेनाऽशु प्रमूर्छितः। दृष्ट्वा सैन्यञ्च सन्त्रस्तं कालशरैर्विदारितम् ॥१७॥
टङ्कारश्च कृतः क्रोधादुत्क्षिपन् वा पतङ्गिकाम्[४]। आहूय सर्वसैन्यञ्च आज्ञापयत्स सारथिम् ॥१८॥
भो सूत नय यत्राऽसौ कालो रथं च साम्प्रतम्। ततः सूतो रथं शीघ्रं वाहाँश्चाऽचोदयत् किल[५] ॥१९॥
ततोऽवोचद्धि संह्लादः कालाय लोककालिने। श्रावयन् सर्वदेवाँश्च स्वसैनिकान्[६] ततोऽपरान् ॥२०॥

संह्लाद उवाच

कालशब्दश्च ते ख्यातो मृतानां काल एव च ॥२१॥
न तु जीवभृतां कालः कलये न क्षमां त्वयि[७]। न समर्थोऽसि कालस्त्वं लोकानां प्राणधारिणाम् ॥२२॥
कालः कलयितुं कालान्नाऽकाले कर्म्मवर्त्तिनाम्। युध्यस्व पौरुषञ्चेत्ते मया सह परेतराट् ॥२३॥
इदानीं दर्शयौजस्ते चाऽन्ते च दर्शयाम्यहम्। हत्वा दैत्यान्बहूनाजौ बलवाँस्त्वं समन्ततः ॥२४॥
क्षुद्रा हता न दूयेऽहं युध्यस्व बलिनाऽधुना[८]। यावतीनां हतानां त्वन्तावतीनाञ्च साम्प्रतम् ॥२५॥
हत्वा त्वामुद्धरिष्यामि गुरुमन्त्रेण चात्मनः।

काल उवाच

किं वल्गसे[९] चिरं मूढ दर्शय तेऽद्य पौरुषम् ॥२६॥
न वल्गन्ते च शूरा ये दर्शयन्त्यात्मपौरुषम्। हत्वा त्वां सान्वयं राज्यं करिष्यति पुरन्दरः ॥२७॥
निष्कण्टकं त्रिलोकञ्च कृत्वा मूढ सुनिश्चितम्।

---

कालले युद्धमा संलग्न पदारोही दश हजार राक्षसका टाउकाहरू भालाले एक एक गरी काटे। उनले त्यसपछि पनि युद्धमा संलग्न करोडौं दैत्यहरूलाई करोडौं हजार भालाहरूले प्रहार गरे। हे अगस्त्य मुनि ! त्यसपछि कालको बाणले घाइते भएका सबै दैत्यका सेनाहरू काँप्दै दशै दिशातिर भागे। कालका बाणले घाइते भएर डराएका सेनालाई देख्नासाथ महावीर संह्लाद रीसले मूर्च्छा पर्‍यो ॥१४-१७॥

रिसाहा संह्लादले मधुमक्खीलाई पनि उडाउने गरी धनुष्टङ्कार गर्‍यो अनि सबै सेना र सारथिलाई बोलाएर भन्यो – हे सारथि ! जहाँ काल बसेको छ, त्यहाँ रथ लैजाऊ। त्यसपछि सारथिले रथ तथा घोडालाई तुरुन्त त्यतैतिर लिएर गयो। त्यसपछि संह्लादले सम्पूर्ण देवता, आफ्ना सेना र अरूलाई पनि सुनाउँदै संसारका काल भएका काललाई भन्न थाल्यो ॥१८-२०॥

संह्लादले भन्यो – हे काल ! काल भन्ने तेरो नाम प्रसिद्ध छ। तँ मरेका प्राणीको काल होस्। तँ बाँचेका प्राणीको काल होइनस्। तिनीहरूलाई मार्ने तेरो सामर्थ्य छैन। प्राणधारी प्राणीलाई मार्न सक्दैनस्। कालले समय पुगेकालाई मार्न सक्छ, कर्ममा संलग्न व्यक्तिलाई विना समयमा केही गर्न सक्दैन। हे यमराज ! सामर्थ्य भए मसित युद्ध गर। लडाईंमा धेरै दैत्यलाई मारेर बलियो भएको छस्, अब सामर्थ्य देखा, त्यसपछि म देखाउनेछु। क्षुद्र दानव मरे पनि म आत्तिएको छैन। यदि सामर्थ्य छ भने लड, तँलाई मारेर मेरो गुरुद्वारा प्रदत्त मन्त्रको उपयोग गरी तैँले मारेका जतिलाई बचाउनेछु ॥२१-२५½॥

कालले भने – हे मूर्ख ! धेरै नचम्की, पुरुषार्थ देखा। वीरहरू कहिल्यै चम्किंदैनन्, आफ्नो पुरुषार्थ देखाउँछन्। तेरो वंशसहित तँलाई मारेपछि इन्द्रले तीनै लोकको निष्कण्टक राज्य गर्नेछन्। हे मूर्ख ! यो कुरा साँचो हो ॥२६-२७½॥

---

४. क्रोधी सम्मार्य सुपतञ्जिकाम्, इति न.सं.पु.पाठः। ५. वाहाँश्च तत्र चोदयत, इति न.सं.पु.पाठः। ६. स्वसैन्याँश्च, इति न.सं.पु.पाठः।
७. त्वं क्षमा नहि, इति न.सं.पु.पाठः। ८. युध्यस्वाद्य बली यदि, इति न.सं.पु.पाठः। ९. न वल्गसे, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

निशम्यैतद्वचो धीमन् कालस्य सैन्यमध्यतः ॥२८॥
अमर्षपूरितो दैत्यो ददंश चाऽधरं भृशम्। आकर्णं धृतवाँश्चापं शतं शरं निधाय[१०] च ॥२९॥
ज्यायाञ्च कालमुद्दिश्य प्रेषयामास तान् बहून्। जघान प्रसभं बाणैः कालं कालनिभैर्मुने ॥३०॥
निचखान सहस्राणि कालस्य सर्वमर्म्मसु। दशभिर्दशभिर्वाहान् जघान लघुहस्ततः ॥३१॥
सारथिं दशभिर्भित्त्वा द्वाभ्यां चिच्छेद च ध्वजम्। विंशतिभिस्त्रिंशद्भिश्च कर्णान्तमुद्धृतैः[११] शरैः ॥३२॥
जघान रथिनो वीरान् पदातीन् वाहनानि च। सारथींश्च ततो यानं कालस्य युद्धदेशतः ॥३३॥
अपोवाहितमालोक्य पीडितं तघु चाऽन्तिकम्। ततश्च दुद्रुवुर्युद्धाद्देवसेनाः पुरं प्रति ॥३४॥
तच्छरैः पीड्यमानास्ताः प्रेक्ष्याऽपोवाहनं यमम्। संह्रादश्च तदा दैत्यो वल्गमान इतस्ततः ॥३५॥
ससर्ज्ज शरवर्षाणि चक्रे सिंहरवान् पुनः। ततोऽभूत् सुमहद्युद्धं तुमुलं लोमहर्षणम् ॥३६॥
भीष्मं सुरासुराणाञ्च यातुधाननिकुम्भयोः। तोमरैर्भिन्दिपालैश्च प्रासैश्च परिघैस्तथा ॥३७॥
मुष्टिभिश्च शरैः खड्गैर्जघ्नतुस्तौ परस्परम्। नैर्ऋत्यश्च ततो विप्र सज्यं कृत्वा महद्धनुः ॥३८॥
जगामाऽसुरमध्ये च रथेनाऽशु महारथः[१२]। ततः ससर्ज्ज बाणानां वर्षाणि च समन्ततः ॥३९॥
तमोभूता दिशः सर्वा छाद्यमाना नभस्तलम्। शरासारैर्महायुद्धे निष्प्रयत्नाश्च वाहकाः[१३] ॥४०॥
कृष्णपक्षे च हेमन्ते आसारैर्यामिनी[१४] यथा। बहून् शरान् समादाय निचखान स नैर्ऋतः ॥४१॥
निकुम्भाङ्गे सदा रेजुर्जलौका इव वृष्टिषु। सन्ताड्य सारथिं बाणरथवाहाँस्तथापरान् ॥४२॥
चिच्छेद तस्य मौर्वीञ्च सशरं स शरासनम्। पदातीन् रथिनः सर्वान् बाणैरामर्दयत्ततः ॥४३॥
अश्वान्नागाँस्तथोष्ट्राँश्च नैर्ऋतश्च पृथक् पृथक्। दुद्रुवुर्दैत्यसेनाश्च त्रस्यमाना इतस्ततः ॥४४॥

---

कार्तिक स्वामीले भन्नुभयो – कालको यो कुरा सुनेर संह्रादले सेनाको माझबाटै रीसले खूबसित ओठ टेक्यो र सय बाण चढाएर कानसम्म धनुषलाई खिँच्यो। त्यसले काललाई लक्ष्य गरेर धेरै पटक ताँदो फड्काऱ्यो र कालजस्ता बाणले काललाई बेस्सरी हान्यो। छिट्ये-छिट्ये हात चलाएर संह्रादले कालका सबै मर्मस्थलमा हजार बाण हिर्कायो, दश-दश बाणले वाहनलाई हिर्कायो। दश बाणले सारथिलाई हिर्कायो र दुईवटा बाणले ध्वजा काट्यो। कानसम्म पुग्ने गरी खैँचिएका तीस-तीस तथा बीस-बीस बाणले रथारोही सैन्य, पैदलयात्री सैन्य, वाहन, सारथि र कालको यानलाई युद्ध क्षेत्रबाटै हटायो ॥३२-३३॥

नजिकैबाट छिट्ये-छिट्ये दौडन लागेको पीडित सेनालाई देखेर देवताका सेना युद्धबाट भागे। राक्षसका बाणहरूले पीडित सेना र वाहनरहित यमराजलाई देखेर संह्राद चारैतिर उफ्रन थाल्यो। त्यसपछि उसले बाणवर्षा गऱ्यो, सिंहगर्जन गऱ्यो अनि रोमाञ्चकारी घनघोर युद्ध भयो। देवता, असुर, राक्षस र निकुम्भले तोमर, भिन्दिपाल, माला र वज्रले परस्परमा हानाहान गरे ॥३४-३७॥

हे अगस्त्य मुनि ! महारथी नैर्ऋतले ठूलो धनुष चढाएर राक्षसहरूको माझमा गएर चारैतिर बाणहरूको वर्षा गरे। त्यस महायुद्धमा बाणको वर्षाले गर्दा आकाश ढाकिएर सबै दिशा अँध्यारा भए। वाहनहरूले काम गर्न छोडे। हेमन्त ऋतुको कृष्णपक्षमा वर्षा भएको रातजस्तै अँध्यारो हुने गरी नैर्ऋतले धेरै बाणहरू लिएर प्रहार गरे ॥४१॥

ती बाणहरू निकुम्भको अङ्गमा वर्षामा गड्यौला जस्तै देखिन्थे। नैर्ऋतले सारथि, बाण, रथ, वाहन आदिलाई हिर्काए। उनले संह्रादका ताँदो, बाण र ठोक्रो काटे। उनलेबाणद्वारा सम्पूर्ण पदाति, रथारोही सैन्यको भेदन गरे। नैर्ऋतले छुट्टाछुट्टै बाणले घोडा, हात्ती र ऊँटलाई हिर्काए ॥४३-४४॥

---

१०. प्रधाय, इति न.सं.पु.पाठः। ११. त्रिंशैस्त्रिंशैस्तथा विंशैराकर्णम्, इति न.सं.पु.पाठः। १२. महारथी, इति न.सं.पु.पाठः।
१३. वाहनाः, इति न.सं.पु.पाठः। १४. रजनी, इति न.सं.पु.पाठः।

विसृज्यायोधनं विप्र नैर्ऋतिषुगणार्दितः। निकुम्भोऽपि समालोक्य चामर्षैः पूरितस्तदा ॥४५॥
त्रस्तं पलायितं सैन्यं भिन्नसेतुमिवार्णवम्। महारथो[१५] निकुम्भोऽपि ततः सैन्यैः समावृतः ॥४६॥
जगाम त्वरितं धन्वी नैर्ऋतो यत्र तिष्ठति। समागतो रथेनाऽऽजौ कम्पयन् स पतङ्गिकाम् ॥४७॥
उवाच कौणपं क्रोधी श्रावयन्सर्वसैनिकान्।

निकुम्भ उवाच

निकषात्मज मन्दात्मन्नीचवृत्तौ रतः सदा ॥४८॥
प्राणिनां रक्तपो नित्यं मांसाहारी निशाचर। नखायुधो विरूपोऽसि लोकनिन्द्यकलेवरः ॥४९॥
गुणैर्निद्यैः[१६] समायुक्तः क्षुद्रोऽसि त्वं न संशयः। इदानीं दर्शय क्षुद्र त्वमस्मासु[१७] पराक्रमम् ॥५०॥
अद्य त्वां च हनिष्यामि तोषयन्[१८] दनुजेश्वरम्।

स्कन्द उवाच

इत्युक्त्वा च निकुम्भोऽसौ महात्मा च महाबलः[१९] ॥५१॥
आदाय सशरञ्चापं ततार ज्यास्वनं पुनः। आकर्णञ्च समुत्सार्य्य सशरं हि गुणं ध्रुवम् ॥५२॥
स प्राहरत्[२०] शरांस्तीक्ष्णान् रक्षोऽसृक्पानलालसान्। सारथिञ्च जघानाऽशु ध्वजं चिच्छेद च त्रिभिः ॥५३॥
जाम्बूनदैश्च बाणौघैश्छत्रञ्च रथवाहकान्। रथिनश्च ततो भूयः पदातीन् युद्धदुर्म्मदान् ॥५४॥
जघान बहुबाणैश्च सन्दश्य चाऽधरं लघु। ततो व्रणयुतं सूत चाऽऽलोक्य रथिनं युधि ॥५५॥
अपोवाह यदार्याऽशु[२१] विमानं स्वर्णभूषितम्। अपोवाहं समालोक्य विमानं नैर्ऋतं स्थितम् ॥५६॥
दुद्रुवुर्देवसेनाश्च नगरीं त्वमरावतीम्।

ततश्च दूतः सहसा च गत्वा न्यवेदयत्तां समितेः प्रवृत्तिम्।
यथा हि भङ्गं युधि नैर्ऋतस्य पुरन्दरायासुरचेष्टितञ्च ॥५७॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे देवासुरसंग्रामे कालनैर्ऋतयोर्यानापोवाहनं नाम सप्तविंशतितमोऽध्यायः ॥२७॥

---

नैर्ऋतका बाणद्वारा पीडित दैत्यका सैन्यहरू चारैतिर भागे। बाँध फुटेको पानी झैं डराउँदै भाग्न लागेको सैन्यलाई देखेर निकुम्भ रीसले मुर्मुरियो। त्यसपछि महारथी निकुम्भ पनि जहाँ नैर्ऋत थिए, त्यसै स्थलमा रथ चढेर झण्डा फर्फराउँदै गयो र सबै सैन्यलाई सम्बोधन गर्दै रिसाएर भन्यो ॥४५-४७॥

निकुम्भले भन्यो - हे राक्षसीका छोरा ! तँ नीच होस्, नीच वृत्तिमा सधैँ तँ लागेको छस्। तँ प्राणीको रगत पिउँछन्, मासु खान्छस्। हे निशाचर ! तेरा नङ हतियारजस्ता छन्, तँ विरूप छस्, तेरो शरीरलाई सबैले गिज्याउँछन्। यिनै निन्द्य गुणले युक्त भएको तँ क्षुद्र होस्, यसमा शङ्का छैन। हे क्षुद्र ! अब हाम्रो अगाडि पराक्रम देखा। आज म तँलाई मार्छु र राक्षसराजलाई सन्तुष्ट तुल्याउँछु ॥४८-५०॥

कार्तिक स्वामीले भन्नुभयो - यति भनेर महात्मा र बलवान् निकुम्भले बाणसहितको धनुषलाई फैलायो र धनुष्टङ्कार गर्‍यो। बाणसहित भएको धनुषले डोरीलाई कानसम्म तानेर राक्षसको रगत पिउने लालसा राख्ने बाणहरू फ्याँक्यो। तुरुन्त सारथि मार्‍यो, तीनवटा बाणले ध्वजा काट्यो ॥५१-५३॥

सुवर्णमय बाणहरूले छाता, रथका वाहन, रथारोही सेना, युद्धकुशल पैदलयात्री सेनाहरूलाई मार्‍यो। ओठ टोक्दै धेरै बाणहरू प्रहार गर्‍यो। त्यसपछि लडाईंमा रथ हाँक्ने सारथिलाई घाइते भएको देखेर सुवर्णभूषित विमानलाई तुरुन्त फर्कायो। नैर्ऋतको विमान फर्कन लागेको देखेर देवताका सेनाहरू अमरावती सहरतिर भागे ॥५४-५६½॥

त्यसपछि दूतले तुरुन्त गएर त्यो युद्धमा भएको पराजयको वृत्तान्त र युद्धमा राक्षसद्वारा गरिएका सबै क्रियाकलापहरूबारे इन्द्रलाई निवेदन गर्‍यो ॥५७॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गत हिमवत्खण्डको देवासुर युद्धमा काल र नैर्ऋतको पलायननामक सत्ताइसौँ अध्याय पूर्ण भयो।

---

१५. महारथी, इति न.सं.पु.पाठः। १६. एतैर्निन्द्यैः, इति न.सं.पु.पाठः। १७. अस्माकञ्च, इति न.सं.पु.पाठः।
१८. तोषये, इति न.सं.पु.पाठः। १९. महाबली, इति न.सं.पु.पाठः। २०. प्रेषयामास, इति न.सं.पु.पाठः।
२१. अपोवाहं समालोक्य, इति न.सं.पु.पाठः।

# अष्टाविंशतितमोऽध्यायः

## देवासुरयुद्धे वरुणानिलयो रथपरावर्तनम्

स्कन्द उवाच

भूयो युद्धं महच्चाऽऽसीद्देवासुरभयङ्करम्। पाशिकालकयोर्विप्र चाऽन्योन्यं हन्तुमीप्सया ॥१॥
ससृजतुश्च शरासारान् देवाश्च दनुजास्तथा। अन्धीभूता दिशः सर्वास्तमिस्रेव सवारिदाः ॥२॥
तोमरैः परिघैस्तीक्ष्णैः प्रासैः परशुपट्टिशैः। बाणैर्हिरण्यपुङ्खैश्च जघ्नुर्मिथः सुरासुराः ॥३॥
अमर्षपूरितः क्षिप्रं प्रयाणाय रथस्य च। प्रचेताश्च महावीरः सूतमाज्ञापयद्युधि ॥४॥
भोः सूत त्वं महाबाहो वाहान्प्रचोद्य साम्प्रतम्। तत्र नयाऽशु मे यानं यत्र तिष्ठति कालकः ॥५॥
तदाकर्ण्य ततः सूत आज्ञाञ्चैव प्रचेतसः। यानं प्रावाहयदा[1]द्वेगेन कालकान्तिकम् ॥६॥
ततः शरान्समाधाय आकर्णपूरितं धनुः। प्रेषयामास शीघ्रं स जातरूपाङ्कितान् शरान् ॥७॥
ततः पाशी समुद्दिश्य कालकं तं महासुरम्। जघान स शरैस्तीक्ष्णैः सहस्रैर्युगपत्तदा ॥८॥
ततः पाशैः प्रबद्ध्वाऽशु प्रचेताश्चाऽसिनाऽसुरान्। शतानि च सहस्राणि जघान रणमूर्द्धनि ॥९॥
रथिनो वरवीरांश्च तदग्रे युद्धलालसान्। जघान च पुनर्बद्ध्वा पाशैः प्रासैः परश्वधैः ॥१०॥
ततस्ते दुद्रुवुर्दैत्या रथिनोऽपि पदातयः। दैत्यसैन्यप्रहन्तारं दृष्ट्वा तं कालसन्निभम् ॥११॥
भेजिरे दनुजाः सर्वे कम्पमाना दिशो दश। तच्छरैर्भिन्नदेहाश्च युद्धं त्यक्त्वा भयातुराः ॥१२॥

---

## अध्याय- २८

## देवासुरयुद्धमा वरुण र वायुको पलायन

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! देवता र राक्षसबीच डरलाग्दो युद्ध भयो। वरुण र कालक दैत्यले परस्पर आघात पुर्‍याउन क्रमशः दैत्य तथा देवताहरूमाथि बाणहरूको वर्षा गरे। यसले गर्दा सबै दिशा बादल लागेको रातजस्तै अन्धकारमय भए ॥१–२॥

देवता र राक्षसले घुयेँत्रा, खुँडा, तीखा भाला, बञ्चरा र सुवर्णमय पङ्ख भएका बाणले परस्परमा हानाहान गरे। रीसले चूर भएर महावीर वरुणले सारथिलाई युद्धक्षेत्रतर्फ प्रस्थानका लागि तुरुन्त रथ हाँक्न आज्ञा दिए– हे पराक्रमी सारथि ! तिमी अब तुरुन्त रथ लिएर जहाँ कालक दैत्य बसेको छ त्यहाँ लैजाऊ ॥३–५॥

वरुणको यस्तो निर्देशन सुनेर सारथिले तत्काल वेगपूर्वक रथ कालकको नजिकै लग्यो। त्यसपछि वरुणले धनुषमा बाण चढाएर कानसम्म पुग्ने गरी खैँचदै सुवर्णमय बाणहरू तुरुन्त छोडे। ती वरुणले कालक दैत्यलाई ताकेर हजारवटा तीखा बाण एकै पटक प्रहार गरे। त्यसपछि वरुणले युद्धक्षेत्रमा सयौँ करोडौँ राक्षसहरूलाई पाशले बाँधेर तरवारले हाने। आफ्ना सामुन्ने लड्न आउने शूर योद्धाहरूलाई वरुणले पाशले बाँधेर भाला र बञ्चराले प्रहार गरे। यसरी दैत्यसेनामाथि प्रहार गरिरहेका कालस्वरूप वरुणलाई देखेर रथारोही तथा पदाति दैत्यहरू भागे। वरुणका बाणबाट घायल शरीर भएर डराई आत्तिएर काँप्न लागेका ती दैत्यहरू युद्ध छोडेर दशै दिशातिर भागे ॥६–१२॥

---

१. प्रवाहयेद्, इति न.सं.पु.पाठः।

दृष्ट्वा तांश्च ततो दैत्यः कालको नाम वीर्य्यवान्। भटान् पलायमानान् स्वान् सूतं प्रोवाच सत्वरम् [२] ॥१३॥
सूत त्वञ्च महाबाहो सर्वयुद्धविशारद। इदानीं योद्धुकामोऽहं तत्र सार्द्धं प्रचेतसा ॥१४॥
रथं नय महावीर प्रचेता यत्र तिष्ठति। शीघ्रं प्रचोदयाश्वान्मे नाकार्यं चिरमुत्सहे ॥१५॥
निशम्यैतद्वचो विप्र कालकेन प्रभाषितम्। प्राचोदयद्रथं वाहान्सध्वजं स्वर्णभूषितम् ॥१६॥
तूर्णं समानयत्तत्र यत्र तिष्ठति तोयराट्। ततश्च कालकः क्रोधी ददर्श यादसां पतिम् ॥१७॥
आकर्णञ्च समुत्सार्य लक्ष्यीकृत्य स्तनान्तरम्। सहस्रशः शरैर्वीरो जघान वरुणं भृशम् ॥१८॥
भूयः शरसहस्राणि समादाय च कालकः। निचखान शरीरेषु रक्तपेव प्रचेतसः ॥१९॥
ततः सूतं जघानाशु त्रिंशद्भिश्च शरैस्तथा। ध्वजं चिच्छेद च द्वाभ्यां त्रिंशद्भिश्च [३] स वाहनम् ॥२०॥
शतैः शतैस्तथा योधान्पदातीन्रथिनः पुनः। जघान च शरैस्तीक्ष्णैः सिंहनादं ननाद च ॥२१॥
वारुणञ्च ततो यानमापोवाहयदाशु च। बहुवाणव्रणं प्रेक्ष्य सूतः प्राचेतसं मुने ॥२२॥
दृष्ट्वा यानमपोवाहञ्चायोधनात्प्रचेतसः। देवसेना भयत्रस्ता दुद्रुवुश्चामरावतीम् ॥२३॥
भूयश्च युयुधुर्विप्र बलिवाय्वोर्मिथो भृशम्। तयोरमर्षिणोः सेनाः परस्परजयेच्छया ॥२४॥
ससृजुः शरवृष्टिं ते विवुधासुरसैनिकाः। नभोमासे यथासारैरन्धीभूतं दिगन्तरम् ॥२५॥
ततो वायुर्महातेजा आदाय सशरं धनुः। समादिदेश सूताय प्रयाणार्थं रथस्य वै ॥२६॥
भो सूत त्वं महाभाग सञ्चोद्याश्वान् रथं मम। साम्प्रतं नय युद्धाय तत्र यत्र स्थितो बलिः ॥२७॥
सम्यग्वाहय यानं मे चैतानश्वान् प्रताडय। युद्धज्ञ स्वपरेषाञ्च ज्ञात्वा तत्र बलाबलम् ॥२८॥

---

त्यसपछि अत्यन्त पराक्रमी कालक दैत्यले भाग्न लागेका आफ्ना सेनालाई देखेर सारथिलाई भन्यो – हे सारथि ! तिमी सबै युद्धकलामा निपुण छौ। म अब युद्धभूमिमा वरुणसँग लड्छु। हे महावीर ! जहाँ वरुण बसेको छ, मेरो रथ तुरुन्त त्यतैतिर लैजाऊ, म बेकाममा बस्न चाहन्नँ। हे अगस्त्य मुनि ! यसरी कालकले भनेको सुनेर सारथिले ध्वजाले युक्त भएको भएको रथ र वाहनलाई जहाँ वरुण बसेका थिए, त्यतैतिर लग्यो। त्यसपछि रिसाहा कालकले पनि वरुणलाई देख्यो ॥१३-१७॥

वरुणलाई देखेपछि वीर कालक दैत्यले उनको दुई स्तनको बीच अर्थात् छातीमा ताकेर हजार पटक बाणहरूले हिर्कायो। त्यसपछि पुनः कालक दैत्यले हजारौं बाण लिएर वरुणको शरीरमा रहेको रगत पिउँछु कि भने झैं गरी प्रहार गर्‍यो। यस्तै तीस बाणले वरुणको सारथिलाई हान्यो, दुई-दुई बाण हानेर ध्वजा छिनाल्यो र तीस-तीस बाण वाहनमाथि प्रहार गर्‍यो। उसले पदाति तथा रथारोही देवसैन्यलाई सयवटा तीखा बाणले हानेर सिंहनाद गर्‍यो। हे अगस्त्य मुनि ! धेरै बाण लागेर घायल भएका वरुणलाई देखेर सारथिले तत्काल वरुणको रथ फर्कायो। त्यसपछि वरुणको रथ युद्धबाट पराङ्मुख हुन लागेको देखेर देवसेना डराएर अमरावतीतिर भागे ॥१८-२३॥

हे अगस्त्य मुनि ! त्यसपछि ईर्ष्यालु र जित्न इच्छुक बलि र वायुका सैनिकहरू परस्परमा युद्ध गर्न लागे। त्यसपछि देवता र राक्षसका सेनाले बाण वर्षा गरे। यसले गर्दा वर्षाले श्रावण महिना अन्धकारमय भए झैं ती दिशाका अन्तिम भागसम्म सबै अँध्यारो भयो। त्यसपछि अतितेजस्वी वायुले बाणले युक्त धनुष लिएर सारथिलाई रथ हाँक्न आज्ञा दिए- हे भाग्यशाली सारथि ! जहाँ बलि बसेको छ, युद्धका लागि अब मेरो रथ त्यतैतिर हाँकेर लैजाऊ। हे युद्धज्ञ ! आफ्नो र शत्रुको बलाबललाई विचार गरेर मेरो यान राम्रोसित हाँक, यी घोडालाई पनि कुदाउनका लागि हिर्काऊ ॥२४-२८॥

---

२. सैन्यान्, इति न.सं.पु.पाठः। ३. त्रिंशैस्त्रिंशैश्च, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

निशम्येति वचो वायोः सूतश्चाऽश्वान्प्रचोद्य च। तत्र समानयद्यानं यत्राऽऽसीद् दैत्यराड् बलिः ॥२९॥
तत्र बलिं ददर्शाऽऽजौ हिरण्यरथसंस्थितम्। प्रहरन्तं[४] शरान् तीव्रान् बाणान् मूर्ध्नि व्यवस्थितान् ॥३०॥
ततो वायू रुषाविष्टश्चाऽयुतं शरमादधे। ज्यायां बाणैर्द्धनुस्तूर्णञ्चक्रीकृत्य जघान तम् ॥३१॥
जाम्बूनदमयापुङ्खान्भूयो बाणान् हि विग्रहे। निचखान बलेर्वायुस्ते पपुस्तस्य शोणितम् ॥३२॥
निचखान ततो वाहान्पञ्चाशद्भिः शरैर्मुने। पञ्चविंशतिभिर्भूयः सूतं जघान सत्वरम् ॥३३॥
द्वाभ्यां चिच्छेद केतुञ्च सपताकं समुच्छ्रितम्। द्वाभ्यां चिच्छेद हस्तस्थं तदा बाणं शरासनम् ॥३४॥
शतेन पत्रिणा[५] विप्र रथिनो हि जघान सः। पञ्चाशद्भिः पुनर्योधान्पदातींश्च तदर्द्धकैः ॥३५॥
केचित्खड्गैस्तथा केचित् प्रासैः परश्वधैः शरैः। भिन्दिपालैर्गदाभिश्च देवा जघ्नुश्च दानवान् ॥३६॥
ततः सेनाश्च दैत्यानां दुद्रुवुश्च दिशो दश। व्रणवन्त्यः शरैर्वायोः कम्पदेहा भयातुराः ॥३७॥
बलिश्च सारथिश्चैव समुत्तीर्णौ क्षणाद् व्यथाम्। सहमानौ[६] शरैर्भिन्नौ भाद्रे गा इव वृष्टिभिः ॥३८॥
ततो बलिश्च तत् प्रेक्ष्य पलायितं स्वसैन्यकम्। त्रस्यमानं शरैर्भिन्नं भिन्नसेतुमिवाऽऽपगाम् ॥३९॥
उवाच वचनं भूयो बलिर्महाबलस्तदा। सैन्येभ्यस्त्रस्यमानेभ्यो राजनीतिसमायुतम् ॥४०॥

बलिरुवाच

रे रे दैत्या अधर्मस्था युद्धधर्म्मपराङ्मुखाः। निवर्तध्वं निवर्तध्वं कुतो वश्चागतं भयम् ॥४१॥
अस्मद्धर्मं परित्यज्य कातरत्वं समाश्रिताः। धिगस्तु पौरुषं वो हि यतस्त्रस्ताः पलायिताः ॥४२॥
पलायनेन सिद्ध्यन्ति कार्याणि न प्रभोर्यतः। इच्छामो हि कथं[७] त्यक्तुं हिरण्यकशिपोर्वयम् ॥४३॥
दैत्यधर्मं समास्थाय युध्यध्वं हि मया सह। प्राप्नुमः समरे सिद्धिमायान्तु भो महाबलाः ॥४४॥

---

कार्तिक स्वामीले भन्नुभयो – वायुको यस्तो कुरा सुनेर सारथिले घोडालाई हाँक्दै जहाँ बलि थिए त्यसै ठाउँमा लग्यो। त्यस युद्धमा वायुले सुवर्णमय रथमा बसेर व्यवस्थित ढङ्गले शिरमा बाण प्रहार गरिरहेका बलिलाई देखे। त्यसपछि वायुले रिसाएर दश हजार बाण लिएर ताँदोमा बाण चढाएर चक्राकार बनाई बलिमाथि प्रहार गरे। यसैगरी वायुले बलिको शरीरमा सुवर्णमय पङ्ख भएका बाणहरू प्रहार गरे। ती बाणले बलिको शरीरको रगत पिए ॥२९–३२॥

हे अगस्त्य मुनि ! त्यसपछि उनले अनवरतवाहनलाई पचासवटा बाणले र सारथिलाई पच्चीसवटा बाणले हाने। उनले दुईवटा बाणले फैलिएका ध्वजापताकालाई र दुईवटा बाणले हातमा रहेको बाण तथा ठोक्रालाई पनि छेदन गरे। हे अगस्त्य मुनि ! वायुले सय बाणले रथारोही सैन्य, पचास बाणले लडाकु सैन्य र त्यसको आधा (पच्चीस) बाणले पदाति सैन्यलाई प्रहार गरे। देवताहरूमध्ये कसैले तरवार, कसैले भाला, कसैले बञ्चरा, कसैले तोप, कसैले त्रिशूल र कसैले गदाले दानवहरूलाई हाने ॥३३–३६॥

त्यसपछि वायुका बाण लागेर घाइते भएका दैत्यका सेनाहरू डरले शरीर कपाउँदै दश दिशातिर भागे। यसपछि भाद्र महिनाको वर्षाले पीडित गाई झैँ बलि र उनका सारथि बाणजनित पीडालाई सहन गर्दै तुरुन्तै उठे। उठेपछि बलवान् बलिले बाँध भत्किएको नदीजस्तै प्रवाहित भएका बाणहरू लागेकाले डराउँदै भाग्न लागेको आफ्नो त्रसित सेनालाई देखेर राजनीतिपूर्ण ढङ्गले भने ॥३९–४०॥

बलिले भने – युद्धबाट भाग्न लागेका हे पापी दैत्य हो ! फर्क, फर्क, तिमीहरू किन डरायौ ?। तिमीहरू आफ्नो धर्म त्यागेर कातर बन्यौ, तिमीहरू डराएर भाग्यौ। त्यसैले तिमीहरूको पुरुषार्थलाई धिक्कार छ। भागेर कुनै पनि काम सफल हुँदैनन्, हामी युद्धबाट पलायन भएर किन हिरण्यकशिपुलाई छोड्न चाहदैछौँ ?। हे बलवान् हो ! त्यसैले दैत्यधर्मलाई अँगालेर मेरो साथमा आई देवताका सेनासँग लडाँइ गर। हामीले सिद्धि पाउनेछौँ, आओ ॥४१–४४॥

---

४. क्षेपयन्तम्, इति न.सं.पु.पाठः।
५. पत्रिभिः, इति न.सं.पु.पाठः।
६. सह्यमानौ, इति न.सं.पु.पाठः।
७. कथमिच्छामहे, इति न.सं.पु.पाठः।
७क. नो यतः, इति न.सं.पु.पाठः।

### स्कन्द उवाच

ततः श्रुत्वा बलेर्वाक्यं नीतियुक्तञ्चतुर्विधम्। समाययुस्तदा विप्र दिग्भ्यो यत्र स्थिता ततः ॥४५॥
ततः प्रहर्षिता दैत्यास्तद्वाक्यै राजनीतिभिः। अपूपुजंस्तमालोक्य साधु साध्विति वादिनः ॥४६॥
ततो ययौ बलिर्विप्र सर्वदैत्यसमावृतः। सान्त्वयन् रथमारुह्य वचनैस्तत्र सारथिम् ॥४७॥
युयुधुश्च सुरा दैत्याः परस्परवधैषिणः। ततः स्वालक्षमानास्ते चाभूवन्स्वान् परान् मिथः ॥४८॥
बाणजालैः समाच्छाद्य जघ्नुस्ते च परस्परम्। पाशैश्च तोमरैः खड्गैः पट्टिशैः परिघैस्तदा ॥४९॥
ततो बलिर्महातेजाः सार्द्धं युद्धविशारदः। युयोध वायुना सव्यमकरोदनिलः पुनः ॥५०॥
संदश्य दशनैरोष्ठमाकर्णमुद्धतैः शरैः। बलिर्जघान वायुञ्च सहस्रैश्च शरैर्भृशम् ॥५१॥
जातरूपमयैः पुङ्खैर्जघान सर्ववर्म्मसु। सहस्रैश्च शरैर्वायोः सिंहनादं ननाद च ॥५२॥
शतेन च रथाश्वांश्च सूतं जघान साम्प्रतम्। ध्वजञ्चिच्छेद्य च द्वाभ्यां लक्ष्यीकृत्य पृथक् पृथक् ॥५३॥
सहस्रार्धैः पुनर्धीरो रथिनो नायकांस्तथा। सहस्रेण तदंशांस्तान् जघान सत्वरं रुषा ॥५४॥
ततोऽपोवाहयत्सूतो यानमायोधनाद् ध्रुवम्। रथिनं व्रणसंयुक्तं सम्प्रेक्ष्य भयविह्वलम् ॥५६॥
सम्प्रेक्ष्य देवसेनास्ता[८] अपोवाहन्नभस्वतः। यानञ्च दुद्रुवुस्त्रस्ताः शक्रराज्यञ्च साम्प्रतम् ॥५७॥

ततश्च सेनास्त्वरितं हि वार्त्तामूचुश्च चेष्टां दनुजस्य गत्वा।
पुरन्दरस्याऽन्तिकमाशु धीमन् समीरयानाय कृतस्य यच्च ॥५८॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे देवासुरसङ्ग्रामे
वरुणानिलयोर्यानापोवाहोनामाऽष्टाविंशतितमोऽध्यायः ॥२८॥

---

कार्तिक स्वामीले भन्नुभयो – त्यसपछि चारै प्रकारका नीतिले युक्त बलिको यस्तो कुरा सुनेर चारैतिरबाट सारा सेना आए। बलिको त्यस्तो राजनीतिप्रेरित वाणी सुनेर सबै दैत्यहरू प्रसन्न भए र उनलाई हेरेर उनीहरूले ठीक भन्नुभयो, ठीक भन्नुभयो भने ॥४५–४६॥

हे अगस्त्य मुनि ! त्यसपछि सम्पूर्ण सारथिलाई सान्त्वना दिँदै लड्का लागि बलि रथमा चढेर त्यस ठाउँमा आए। देवता र दैत्यहरू एक अर्कालाई मार्ने इच्छाले पुनः युद्ध गर्न लागे। उनीहरूले परस्परमा आफ्नो र पराइ पनि चिन्न छोडे। उनीहरूले बाणका समूहले ढाकेर आपसमा पाशो, घुयेँत्रो र वज्रले हानाहान गरे ॥४७–४९॥

त्यसपछि युद्धकलामा कुशल अत्यन्त तेजस्वी बलिले वायुसित युद्ध गरे। त्यसपछि उनले वायुलाई ताँदो कानसम्म खैँचिएर ओठ टोक्दै बाणले कसेर हिर्काए। बलिले सुवर्णमय पङ्ख भएका हजारौँ बाणले वायुको शरीरमा हिर्काए र सिंहनाद गर्दै सयवटा बाणले वायुका रथ, घोडा र सारथिलाई हाने, दुई बाणले वायुको शरीरमा प्रहार गरे र सिंहले झैँ गर्जना गरे ॥५०–५३॥

त्यसपछि बलिले बाण ताकेर रथारोही नायकलाई हाने। उनले तत्काल रिसाएर हजार बाणले सेनाका अङ्गलाई प्रहार गरे । उनले गम्भीर आवाज निकाल्ने चक्रले तुरुन्तै रथलाई चूर्ण पारिदिए। यसपछि भने देवताका पैदल सैन्य दश दिशातिर भागे। त्यसपछि घाइते भई डराएका वायुलाई देखेर सारथिले युद्धबाट रथ फर्कायो। वायुको यान फर्केको देखेर देवताका सैन्यहरू डराउँदै इन्द्रको राज्यतिर लागे ॥५४–५७॥

हे बुद्धिमान् मुनि ! त्यसपछि सेनाले राक्षसका क्रियाकलाप र वायुको यानका सम्बन्धमा जे जस्तो भयो त्यो सबै वृत्तान्त तुरुन्तै इन्द्रलाई गएर सुनाए ॥५८॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गत हिमवत्खण्डको देवासुरयुद्धमा वरुण र वायुको रथपरावर्तन नामक अट्ठाइसौँ अध्याय पूर्ण भयो।

---

८. सैन्यास्ते, इति न.सं.पु.पाठः।

# एकोनत्रिंशोऽध्यायः

देवासुरयुद्धे विश्वकर्मणोऽपयानम्

स्कन्द उवाच

ततो युद्धं महदासीद्देवदैत्यभयङ्करम्। तुमुलञ्च मिथो विप्र विप्रचित्तिकुबेरयोः ॥१॥
रथिनो रथिभिः सार्द्धं पदातयः पदातिभिः। हस्तिनो हस्तिभिर्भूयो युयुधुश्च परस्परम् ॥२॥
ववृषुः[1] शरवर्षाणि देवासुरा मिथो भृशम्। तमोभूता दिगन्ताश्च वृष्टियुक्ताः क्षपा यथा ॥३॥
जघ्नुर्मिथः सुरा दैत्यान्नानाशस्त्रैर्भयङ्करैः। बाणैः खड्गैर्गदापाशैः स्वान् परान् नाभिवेदिनः[2] ॥४॥
ततो नादः समुद्भूतस्त्रैलोक्यस्य[3] प्रकम्पकः। गृह्यतां हन्यताञ्चैव रे रे हाहेति चोल्बणः ॥५॥
रथनेम्युद्भवं भीष्मो वाजिनां ह्रेषितं यथा। गजानां महिषाणाञ्च खरोष्ट्राणां तथैव च ॥६॥
कुबेरोऽपि ततो धीमन् चापमादाय सत्वरम्। उवाच सारथिं तत्र मधुरञ्च प्रसान्त्वयन् ॥७॥
हे सूत त्वं महाप्राज्ञ चोदयाश्वान्ममानिशम्। विप्रचित्तिश्च यत्रास्ति तत्र यानं नयाशु च ॥८॥
ततो निशम्य यक्षस्य सारथिः प्रियभाषितम्। प्रचोद्य च रथं वाहान् विमानं तत्र च प्रापयत्[3क] ॥९॥
कुबेरश्च महातेजा ददर्श द्विषतां बलम्। निघ्नन्तञ्च[4] सुरान्सर्वान् वाणजालैरितस्ततः ॥१०॥
ततः क्रोधसमाविष्टः कुबेरो गुह्यकेश्वरः। आकर्णान्तं समुत्सार्य जघान बाणकोटिभिः[5] ॥११॥
जातरूपमयैः पुङ्खैः युतान् स[6] छद्मगान् मुने। निचखान तदङ्गेषु चोद्दिश्य सर्वसमर्म्मसु ॥१२॥
सूतं शरैर्बिभेदाजौ सहस्रैर्घोटकान्पृथक् । केतुञ्चिच्छेद द्वाभ्याञ्च विप्रचित्तेर्धनाधिपः ॥१३॥

---

## अध्याय- २९

देवासुरयुद्धमा विश्वकर्माको पलायन

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! देवता र दैत्यका बीच भएको युद्धमा विप्रचित्ति र कुबेरबीच भयंकर युद्ध भयो। रथी सैन्य रथी सैन्यसित, पदातिसैन्य पदातिसैन्यसित र हस्तीसैन्य हस्तीसैन्यसित गरेर परस्परमा ठूलो युद्ध हुन लाग्यो ॥१–२॥

देवता र राक्षसहरूले परस्पर बाण वर्षा गरे। पानी परेको रातझैँ सम्पूर्ण दिशाहरू अन्धकारले युक्त भए। देवताहरूले दैत्यहरूलाई र दैत्यहरूले देवताहरूलाई आपसमा तरवार, गदा र पासाले मनपरीसित हिर्काए। त्यसपछि तीनै लोक थर्काउने समात, मार, रे रे, हा हा आदि कोलाहल त्यहाँबाट निस्कियो। त्यस्तै रथको चक्रको डरलाग्दो आवाज आयो। घोडाको त्यस्तै हिनहिनाहट र हात्ती, राँगो, गधा तथा ऊँटको पनि त्यस्तै आवाज आएको थियो ॥३–६॥

हे अगस्त्य मुनि ! कुबेरले आफ्नो धनुषलाई उठाएर मीठो बोलीले सारथिलाई हौसला दिँदै भने – हे प्राज्ञ सारथि ! तुरुन्त घोडा धपाऊ, जहाँ विप्रचित्ति छ, त्यतैतिर यान लैजाऊ। कुबेरले यति भनेपछि कुबेरको यस्तो प्रियवचन सुनेर सारथिले रथ, घोडा र यानलाई त्यतैतिर हाँके। महातेजस्वी कुबेरले सम्पूर्ण देवताहरूलाई बाणहरूले तितरबितर पारेर मार्न लागेका शत्रुसैन्यलाई देखे। त्यसपछि रिसाएर यक्षराद् कुबेरले कानसम्म धनुष तानेर तीखो टुप्पा भएका बाणहरू प्रहार गरे ॥७–११॥

उनले सुवर्णमय पङ्ख भएका गुप्तरूपमा चल्ने बाणहरू विप्रचित्तिको अङ्गका सबै मर्मस्थललाई लक्ष्य गरेर हिर्काए। कुबेरले युद्धमा सारथि र वाहनलाई हजारौँ बाणले छुट्टाछुट्टै प्रहार गरे। यस्तै दुई बाणले विप्रचित्तिको ध्वजालाई काटिदिए ॥१२–१३॥

---

१. ववर्षुः, इति न.सं.पु.पाठः।
२. स्वान्परांश्चाविजानतः, इति न.सं.पु.पाठः।
३. त्रैलोक्यानाम्, इति न.सं.पु.पाठः।
३क. प्रचोद्य च विमानाश्वान्यान तत्र च, इति न.सं.पु.पाठः।
४. घातयन्त, इति न.सं.पु.पाठः।
५. तीक्ष्णकोटिभिः, इति न.सं.पु.पाठः।
६. जातरूपमयान् पुङ्खान् वै, इति न.सं.पु.पाठः।

सहस्रैश्च पृथग्भूयो रथिनो युद्धलालसान्। शतैः शतैः पदातींश्च जघान त्वरितं पुनः ॥१४॥
विप्रचित्ती रुषाविष्टः समुत्तीर्णो व्यथां क्षणात्। युद्धमध्येऽवदत्सूतं श्रावयन्स्वान्द्विषोऽपि च ॥१५॥

विप्रचित्तिरुवाच

भो सूत युद्धवित्प्राज्ञ चोदय रथवाहकान्। तूर्णं तत्र रथं मे त्वं यत्र यक्षः स्थितो नय ॥१६॥
अद्याहं तं हनिष्यामि[७] सयानं सारथिञ्च वै। कुबेरं देवसैन्यानि[८] वाहनानि च साम्प्रतम् ॥१७॥

स्कन्द उवाच

ततो निशम्य सूतश्च वल्गितं विप्रचित्तिना। हर्षपूर्णप्रयाणज्ञः प्रावाहयद्रथं तदा ॥१८॥
यत्र तिष्ठति पौलस्त्यस्त्वरितञ्च रथं मुने। आनयत्तञ्च युद्धज्ञो देवसैन्यं प्रदर्शयन् ॥१९॥
ततो ददर्श पौलस्त्यं प्रहरन्तं[९] शरान्बहून्। ततः कोपप्रयुक्तात्मा महद्धनुः समाददे ॥२०॥
चक्रीकृत्य महाचापं दशायुतैः शरैः क्षणात्। विप्रचित्तिः कुबेरञ्च विव्याध लघुहस्ततः ॥२१॥
भूयश्च नियुतं धृत्वा[१०] बाणाँस्तीक्ष्णमुखाँस्तदा। निचखान हृदि क्षिप्रं कुबेरस्य महात्मनः ॥२२॥
अयुतेनायुतेनैव रथिनो हि जघान सः। द्विसहस्रैः पृथग्योधान् सहस्रैः रथवाहनान् ॥२३॥
सहस्रैर्विप्र पञ्चानां सूतं जघान सत्वरम्। द्वाभ्यां चिच्छेद केतूंश्च कुबेरस्य धनुस्तथा ॥२४॥
ततो देवचमूस्तत्र तपति स्म समन्ततः। उवाम रुधिरं तीव्रं मुखनासाश्रुतिव्रणात् ॥२५॥
ववल्गुर्दैत्यसेनाश्च सन्दृश्य देवसैनिकान्। विप्रचित्तेः शरैर्भिन्नान् रुधिरौघपरिप्लुतान् ॥२६॥
कुबेरस्य च सूतो वै दूरीकृत्य क्षणं व्यथाम्। अपोवाहयदाजौ च यानं समीक्ष्य तद्व्रणम्[११] ॥२७॥
दृष्ट्वा रथमपोवाहं कुबेरस्य तदा मुने। दुद्रुवुस्त्रस्यमानास्ता देवसेनाः पुरं प्रति ॥२८॥

---

उनले फेरि हजार बाणले युद्ध गर्न उद्यत रथीलाई हाने र सय-सय बाणले पैदल सेनालाई हिर्काए। युद्धको माझमा रिसाएको विप्रचित्तिले तुरुन्त व्यथामुक्त भएर उठी आफ्ना तथा शत्रुपक्षलाई सुनाउँदै सारथिलाई भन्यो। विप्रचित्तिले भन्यो - युद्धका ज्ञाता प्राज्ञ हे सारथि ! जहाँ यक्ष बसेको छ, त्यस ठाउँमा तुरुन्त रथ लैजाऊ। आज म कुबेरसहित उसको यान, सारथिका साथै देवताको सेना र वाहनलाई पनि मार्छु ॥१४-१७॥

कार्तिक स्वामीले भन्नुभयो - विप्रचित्ति कुर्लेको सुनेर सारथिले सहर्ष रथलाई अगाडि बढायो। युद्धज्ञ त्यस सारथिले देवताका सेनालाई देखाउँदै जहाँ कुबेर बसेका थिए, त्यसै ठाउँमा विप्रचित्तिलाई ल्यायो। त्यहाँ आएपछि विप्रचितिले धेरै बाणहरू प्रहार गरिरहेका कुबेरलाई देख्यो र रिसाउँदै ठूलो धनुष हातमा लियो र ठूलो धनुषलाई चक्राकार तुल्याएर छिट्ये-छिट्ये हात चलाउँदै एकलाख बाणहरू कुबेरमाथि प्रहार गऱ्यो ॥१८-२१॥

त्यसपछि उसले तीखा दश हजार बाण लिएर महात्मा कुबेरको हृदयमा छिट्ये-छिट्ये हिर्कायो। दश-दश हजार बाणले उसले रथारोही सैन्यलाई तथा दुई हजार बाणले छुट्टाछुट्टै योद्धालाई र हजार बाणले रथका वाहनलाई हान्यो। हे अगस्त्य मुनि ! उसले तत्काल पाँच हजार बाणले सारथिलाई हिर्कायो, दुईवटा बाणले कुबेरको धनुष र ध्वजा पनि काटिदियो। त्यसपछि देवताका सेनाहरू आफ्ना मुख, नाक, कान र घाउबाट रक्तधारा बगाउँदै चारैतिर घुम्न थाले ॥२२-२५॥

विप्रचित्तिको बाण लागेर रक्ताम्य भएका देवताका सेनालाई देखेर दैत्यका सेना उफ्रन थाले। क्षणिक पीडाबाट मुक्त भएर कुबेरको सारथिले आफ्ना पक्षका सेनाहरूलाई रक्ताम्य देखेपछि युद्धबाट रथ फर्कायो। हे अगस्त्य मुनि ! कुबेरको रथ युद्धबाट फर्कन लागेको देखेर देवताका सेना डराउँदै सहरतिर भागे ॥२६-२८॥

---

७. घातयिष्यामि, इति न.सं.पु.पाठः। ८. देवसैन्यांश्च, इति न.सं.पु.पाठः। ९. क्षेपयन्तम्, इति न.सं.पु.पाठः।
१०. गृह्य, इति न.सं.पु.पाठः। ११. तद्व्रणमीक्ष्य च, इति न.सं.पु.पाठः।

घोरं युद्धं पुनश्चाऽऽसीन्[१२] मयस्य विश्वकर्मणः । मायायुद्धं तयोस्तत्र मायाविनोः परस्परम् ॥२९॥
बाणवर्षं ववृषतुश्चाऽऽदौ[१३] मिथो जिघांसया । अन्धीभूता दिशः सर्वाः कृष्णपक्षे यथा क्षपाः ॥३०॥
ततो जघ्नुर्मिथः सेनाः शस्त्रास्त्रैरसिभिः परान्[१४] । बाणैर्हिरण्यपुङ्खैश्च कङ्कगृध्रसुपत्रिभिः ॥३१॥
ततस्त्वष्टा महामायः[१५] सर्वमायाविशारदः । उत्पपातान्तरिक्षे च सरथः सायुधस्तदा ॥३२॥
ववर्ष शरवर्षाणि लोहमुखानि साम्प्रतम् । मयूरकङ्कपत्राणि नभस्थो विश्वसृक् तदा ॥३३॥
ततो मयस्य योद्धारो[१६] भेजिरे हि दिशो दश । शरपातैः प्रभिन्नाङ्गास्त्रस्यमानाः प्रपीडिताः ॥३४॥
ततो मयः स्वकं सैन्यं मायाशरैः प्रपीडितम् । प्रेक्ष्य वियत्स्थिरं विप्र मायिनञ्च रुरोष सः ॥३५॥
उत्पपात मयः क्षिप्रं रथस्थो व्योम्न्यलक्षितः । ववर्ष चाऽश्मवर्षाणि देवसैन्योपरि ध्रुवम् ॥३६॥
भूयो ववर्ष शृङ्गाणि समादाय च मायया । गण्डशैलान् द्रुमाँश्चैव युगपच्च मयोऽसुरः ॥३७॥
देवसेनास्तदा तत्र युद्धं हित्वा प्रदुद्रुवुः । शिलाद्रुमशराघातैर्व्यथिताश्च भयातुराः ॥३८॥
ततो युयुधतुर्वीरौ नानामायाविशारदौ । विश्वकर्ममयौ तौ च नभस्तले ह्यनेकशः ॥३९॥
अलक्ष्यौ तौ च सैन्यानां व्योमस्थौ च विचेरतुः । जघ्नतुस्तौ महात्मानौ शस्त्रास्त्रैर्बहुभिर्मिथः ॥४०॥
ततश्चोत्प्लुत्य यानात्तौ धरण्यां पेततुर्ध्रुवम् । मिथ आलिङ्गितौ वीरौ न मुञ्चन्तौ परस्परम् ॥४१॥
बाहुयुद्धं ततो भूयो युयुधाते परस्परम् । तलैश्च मुष्टिभिश्चैव जघ्नतुर्वै मुहुर्मुहुः[१७] ॥४२॥
युयुधाते गदायुद्धं सर्वभूतप्रकम्पकम् । गदाप्रहारसम्भूतस्फुलिङ्गं द्योतयद्दिशः ॥४३॥
सदृशाश्च ततस्त्वष्ट्रा कृताः सेना हि मायया । तेन युद्धं विधातुं वै स्वात्मतुल्यपराक्रमाः ॥४४॥
मायाजः पुरुषो विप्र युयोध च मयेन वै । साकं तदा महद्युद्धं कठोरं मेदिनीतले ॥४५॥

---

यता विश्वकर्मा र मयबीच ठूलो युद्ध भयो । ती दुई मायावीको त्यहाँ परस्परमा मायायुद्ध भयो ।तिनीहरूले पहिले आपसमा मारामार गर्ने विचारले बाणहरू वर्साए जसले गर्दा कृष्णपक्षको रातजस्तै सबै दिशा अन्धकारमय बने। त्यसपछि सेनाहरूले शस्त्र, अस्त्र, तरवार, सुवर्णमय पङ्ख भएका, कङ्क र गिद्ध चिह्नले अङ्कित बाणद्वारा एकले अर्कालाई हिर्काए। त्यसपछि मायाशास्त्रका ज्ञाता, मायाजाल रच्न सिपालु त्वष्ट्र हतियार साथमा लिएर आकाशतिर उडे। विश्वस्रष्ट्र त्वष्ट्रले आकाशमा रहेर नै फलामका मुख भएका, मयूर तथा कङ्कपत्रले युक्त बाणहरूको वर्षा गरे। त्यसपछि मयका बाणको वर्षाले गर्दा क्षत–विक्षत अङ्ग भएका सेनाहरू डराउँदै दश दिशातिर लागे ॥२९–३४॥

आफ्ना सैन्यलाई मायाद्वारा रचिएका बाणले पीडित भएको देखेर मय आकाशमा स्थिर भएर रहेका मायी त्वष्ट्रसँग रिसायो। रथमा बसेको मय आकाशतिर उफ्र्यो र अदृश्य भयो। त्यसपछि उसले देवताका सेनामाथि ढुङ्गा वर्सायो । त्यसको केही समयपछि मायाजाल रचेर मय दानवले शिखर, साना पर्वत र रुखहरू एकैचोटि वर्सायो । त्यसपछि देवताका सेनाहरू ढुङ्गा, रुख र बाणको आघातले पीडित भएर डरले आत्तिदै युद्ध छोडेर भागे। विभिन्न मायाशास्त्रमा प्रवीण वीर विश्वकर्मा र मयले आकाशमा अनेक किसिमले युद्ध गरे ॥३५–३९॥

तिनीहरू सेनाहरूबाट नदेखिने गरी आकाशमा उडे। ती दुई महात्माले धेरै शस्त्र तथा अस्त्रले परस्पर हानाहान गरे । त्यसपछि यानबाट उफ्रिएर तिनीहरू पृथ्वीमा पछारिए र परस्पर आलिङ्गन गर्न पुगेका तिनीहरूले एक–अर्कालाई छाडेनन् ॥४०–४१॥

अनि तिनीहरूले परस्पर बाहुयुद्ध गरे र आपसमा हत्केला, मुठ्ठीले हानाहान गरे। गदाको प्रहारबाट उत्पन्न भएको फुलिङ्गाले दिशालाई उज्यालो पार्दै तिनीहरूले सम्पूर्ण प्राणीलाई कम्पन पैदा गर्ने गदायुद्ध गरे । त्यसपछि त्वष्ट्रले मयसँग युद्ध गर्न आफ्नो जस्तो पराक्रम भएको सेनाको सृष्टि गरे। हे अगस्त्य मुनि ! मायाबाट पैदा भएको पुरुष मयका साथ लड्न थाल्यो। मय र मायापुरुषको पृथ्वीमा परस्पर घनघोर युद्ध भयो ॥४२–४५॥

---

१२. भूयो युद्धं महानासीत्, इति न.सं.पु.पाठः ।
१३. ववर्षुस्ते, इति न.सं.पु.पाठः ।
१४. सेना, इति न.सं.पु.पाठः ।
१५. महामायी, इति न.सं.पु.पाठः ।
१६. सैन्यास्ते, इति न.सं.पु.पाठः ।
१७. विशन् विशन्, इति न.सं.पु.पाठः ।

विश्वकर्मा ततः स्वर्गं गत्वा चारूढवान्मुने। नानारत्नमयं यानं गगनस्थं महोज्ज्वलम् ॥४६॥
अग्निवृष्टिं ववर्षाऽऽजौ शिलावर्षं ततः परम्। दैत्यसैन्योपरि क्षिप्रं विश्वकर्मा समन्ततः ॥४७॥
शरवर्षं ववर्षाऽशु शस्त्रवर्षं तथाविधम्। द्रुमवर्षं पुनर्विप्र पांशुवर्षञ्च विश्वसृक् ॥४८॥
ततः पेतुश्च दैतेया वमन्तोऽसृङ्[१८] मुखाद् व्रणात्। शस्त्रास्त्रदृषदासारैस्ताड्यमानाः समन्ततः ॥४९॥
ततो मयः समाज्ञाय मायोद्भवं हि पूरुषम्। तत्याज तेन युद्धञ्च चिन्तति स्म युधो विधिम् ॥५०॥
मयोऽपि च तदा विप्र संसृज्य माययात्मनः। सदृशं पुरुषं तेन युद्धं कुर्वन्[१९] मिथः समम् ॥५१॥
उत्पपातान्तरिक्षञ्च मायामयतनुर्मयः[२०]। तत्र ददर्श यानस्थं त्वष्टारञ्च नभःस्तले ॥५२॥
निघ्नन् स च शिलावर्षैर्दैत्यवीरान्[२१] समन्ततः। मयोऽपि त्वरितं तत्र रथमारुह्य रोषवान् ॥५३॥
ववर्ष शरवर्षाणि दुर्भिक्षे शलभानिव। शिलासारं तथा तीव्रं पांसुवर्षं समन्ततः ॥५४॥
देवसैन्योपरि क्षिप्रं ववर्ष स मयस्तदा। ततो मयश्च मायावी माययाऽमोहयद्रणे ॥५५॥
लयैर्गीतैर्मृदङ्गैश्च त्वष्टारञ्चाप्यनर्त्तयत्। नृत्यन्तं गीतवन्तं तं त्वष्टारं प्रेक्ष्य चन्द्रमाः ॥५६॥
ववर्षामृतमादिष्टं मायया त्वष्टृसंज्ञकम्[२२]। ततस्त्वष्टामृतासारैः परिप्लुतो घटोद्भव ॥५७॥
चक्रे चेष्टां महायुद्धे चाययौ समरात्पुरम्[२३]। ॥५८॥

ततोऽवददवृत्रहणं च दूतः प्रवृत्तिमायोधनसम्भवाञ्च।
त्वष्टुश्च भङ्गं युधि मायया यद् विमोहनं सम्प्रति नृत्यरतस्य तस्य[२४] ॥५९॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे देवासुरसङ्ग्रामे विश्वकर्मापयानं नाम ऊनत्रिंशोऽध्यायः ॥२९॥

---

हे अगस्त्य मुनि ! विश्वकर्मा स्वर्गमा गएर आकाशमा रहेको अनेक रत्नले युक्त अत्यन्त उज्यालो यानमा चढे। विश्वकर्माले तुरुन्त युद्धमा दैत्यसेनामाथि अग्नि वर्षा गरे। त्यसपछि ढुङ्गाको वर्षा गरे। त्वष्टले तुरुन्त दानवसेनामाथि बाण, शस्त्र, वृक्ष तथा धूलो वर्षा गरे। त्यसपछि शस्त्रास्त्र र शिलाको वर्षाले ताडित भएर दैत्यहरूले मुखबाट रगत छादे र उनीहरूको घाउबाट रगत बग्न थाल्यो। मायाबाट उत्पन्न भएको पुरुषलाई युद्ध गर्ने आदेश दिएर मयले युद्ध छोडी युद्ध गर्ने विधिको बारेमा विचार गऱ्यो ॥४६-५०॥

मयले पनि मायाद्वारा आफूसमानको पुरुष पैदा गरेर त्यस पुरुषका साथ परस्पर युद्ध गरायो। मायाको शरीर लिने मय अन्तरिक्षमा उड्यो, त्यस आकाशमा उसले यानमा रहेको त्वष्टलाई देख्यो ॥५२॥

रिसाएर मयले तुरुन्त त्यस रथमा चढी अनिकालको बेला सलह बर्सिएझैं शिलाको वर्षा गरेर ती देवताका सेनालाई सबैतिरबाट प्रहार गऱ्यो। त्यतिबेला देवताको सेनामाथि मयले शिला र धूलो वर्सायो र मायावी उसले युद्धमा लयगान र मादलद्वारा त्वष्टलाई नचायो। नाँच्न र गाउन लागेका त्वष्टलाई देखेर चन्द्रमाले अमृत वर्षा गरे ॥५३-५६॥

हे अगस्त्य मुनि ! अमृतका वर्षाबाट त्वष्ट निश्चुक्क भए। त्यसपछि मायाको जाल रच्न छोडेर त्वष्ट युद्धबाट पराङ्मुख भई अमरावती फर्किए। त्यसपछि मयको मायाले गर्दा मोहित भई नाँच्न पुगेका त्वष्टको वृत्तान्तका साथै युद्धका सम्पूर्ण क्रियाकलाप दूतले आई इन्द्रलाई सुनायो ॥५८-५९॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गत हिमवत्खण्डको देवासुरयुद्धमा विश्वकर्माको रथपरावर्तन नामक उनन्तीसौं अध्याय पूर्ण भयो।

---

१८. वमन्नसृद्ध, इति न.सं.पु.पाठः।
१९. योद्धापयन्मिथः, इति न.सं.पु.पाठः।
२० मयो मायामयस्तनुः, इति न.सं.पु.पाठः।
२१. घातयन् स शिलावर्षैर्दैत्यसैन्यान्, इति न.सं.पु.पाठः।
२२ संदर्श्य माययाविष्टं त्वष्टारं ववर्षामृतम्, इति न.सं.पु.पाठः।
२३. चेष्टितवान्महद्युद्धे आययौ समरात्पुरम्, इति न.सं.पु.पाठः।
२४. संप्रति नर्त्तयन्तम्, इति न.सं.पु.पाठः।

# त्रिंशोऽध्यायः

## देवासुरयुद्धे देवानां पराजयः

स्कन्द उवाच

निशम्यैवं वचो विप्र देवानाञ्च पराभवम्। अमर्षैः पूरितः शक्रो देवयोधान्[1] समाह्वयत् ॥१॥
आहूय सर्वयोधान्[2] स दिक्पालांश्च पुरोगतान्। सभायां भर्त्सयामास क्रोधसंरक्तलोचनः ॥२॥

इन्द्र उवाच

धिक्धिक्पराक्रमान्देवान् वः पराजयकांक्षिणः[3]। दिक्पालान् वोऽथ त्वष्टारं जयन्तं त्वां महात्मनः[4] ॥३॥
यतो जीवत्सु युष्मासु सङ्ग्रामे च पराजयम्। प्राप्नोति ते चमूर्देवाः स्वल्पवीर्याः सुरा ध्रुवम् ॥४॥
पराङ्मुखा अधर्मस्था भवेयुर्युद्धदंशिताः। युद्धयध्वञ्च मया सार्द्धमिदानीं भो सुरोत्तमाः ॥५॥
गुरुर्जपति मन्त्रांस्तान्[5] न विद्यन्ते भयानि नः। इदानीञ्चूर्णयामस्तान्निर्गच्छत महासुराः ॥६॥

स्कन्द उवाच

निशम्येति वचो विप्र शक्रस्य विबुधास्तदा। अभिवाद्य तमिन्द्रञ्च पुरा युद्धाय निर्ययुः ॥७॥
अमर्षपूरितः शक्रो निर्ययौ विबुधैर्वृतः। ततस्ते युयुधुः शूरा असुरैः सह सङ्कुलाः ॥८॥
तदा नादो महानासीत् त्रैलोक्यक्षोभको मुने। पटहकांस्यशङ्खानां भेरीमृदङ्गजस्तथा[6] ॥९॥
ततः शक्रो विभेदाऽऽजौ शरैः सन्नतपर्वभिः। ऐरावतं समारूढो रुषा[7] गत्वा सुरान्तिकम् ॥१०॥
कोटिकोटिमहावीरान् जघान दानवाञ्छरैः। पदातीन् रथिनस्तान् तान[8]भिप्रेक्ष्य समन्ततः ॥११॥
जघान त्वरितं शक्रश्चाऽयुतं नियुतं तदा। कोटिकोटिसहस्राणि भूयो दैत्यान्महाहवे ॥१२॥

---

अध्याय- ३०

देवासुरयुद्धमा देवताको पराजय

हे अगस्त्य मुनि ! देवताको पराजय भएको थाहा पाएर क्रुद्ध हुँदै इन्द्रले देवताका सेनाहरूलाई बोलाए। उनले अगाडि रहेका दिक्पालहरूलाई सम्बोधन गर्दै सभामा गाली गरे। उनका आँखा रीसले राता भएका थिए ॥१–२॥

इन्द्रले भने – पराजय भएका पराक्रमी देवताहरूलाई धिक्कार छ। हे दिक्पालहरू हो ! तिमीहरूलाई पनि धिक्कार छ। हे त्वष्ट्य ! जित्न खोज्ने महात्मा तिमीलाई पनि धिक्कार छ। हे देवता हो ! तिमीहरू जिउँदो छँदाछँदै पनि अल्पशक्ति भएर हाम्रो सेनाले लडाईंमा हार्नुपर्‍यो। हे देवता हो ! युद्धबाट हारेर हिँड्ने सबै अधर्मी हुन्छन्। अब तिमीहरू मेरो साथमा दैत्यहरूसँग लडाइँ गर्न हिँड। बृहस्पति मन्त्र जप्नुहुन्छ। हामीलाई कुनै डर छैन। अब तिनीहरूलाई गएर सखाप पारौं। हे देवता हो ! निस्क ॥३–६॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! इन्द्रको त्यस्तो वचन सुनेर उनलाई नमस्कार गर्दै युद्धका लागि देवताहरू अमरावतीबाट निस्किए। रीसले मुर्मुरिएका इन्द्र देवतालाई साथमा लिएर लड्नका लागि अमरावतीबाट बाहिर निस्किएपछि एकत्रित भएर देवताका सेनाहरूले राक्षसहरूसँग युद्ध गरे। त्यसबेला कर्नाल, शङ्ख, मादल, दमाहा र झ्यालीबाट पैदा भएको, तीनै लोकलाई हल्लाउने किसिमको आवाज निस्कियो ॥७–९॥

त्यसपछि इन्द्रले देवताहरूका साथ ऐरावत हात्तीमा चढेर बाणहरू प्रयोग गरी युद्धमा शत्रुहरूको भेदन गरे। देवताहरूले बाणद्वारा करोडौं दानवहरूलाई मारे। त्यस्तै रथी, पैदल सेनालाई चारैतिरबाट घेरेर मारे। इन्द्रले त्यस महायुद्धमा लाखौं, करोडौं राक्षसी सेनाहरूलाई मारे ॥१०–१२॥

---

१. देवसैन्यान्, इति न.सं.पु.पाठः।
२. सर्वसैन्यान्, इति न.सं.पु.पाठः।
३. पराजयैषिणां वचः, इति न.सं.पु.पाठः।
४. दिक्पाला वस्तथा त्वष्ट्य जयन्त तं महात्मना, इति न.सं.पु.पाठः।
५. मन्त्राणि, इति न.सं.पु.पाठः।
६. भेरीशङ्खमृदङ्गानां पटहस्कांस्यजन्मिनाम्, इति न.सं.पु.पाठः।
७. ऐरावत समारुढो गत्वा रुषा, इति न.सं.पु.पाठः।
८. रथिनस्तान् पदातींश्च, इति न.सं.पु.पाठः।

अग्निस्ततो महातेजाश्चाऽग्निवृष्टिं ववर्ष च। दैत्यानां सैनिकान्[९] क्षिप्रमाग्नेयास्त्रैर्जघान च ॥१३॥
ददाहासुरसैन्यानि सहस्राण्यपि हेतिभिः। कोटिकोटिरथान् दैत्यान्नियुतान् रथिभिः सह ॥१४॥
ततो दण्डं समादाय कालो युयोध दानवैः। जघान च महायुद्धे[१०] कोटिकोटिसहस्रशः ॥१५॥
भूयो जघान दैत्यान्स शरैश्च कालसन्निभैः। रथिनश्च रथाँस्तत्र दण्डपातैः प्रचूर्णयन् ॥१६॥
नैर्ऋतोऽपि तथा भूय आदाय सशरं धनुः। युयोध दानवैः सार्द्धं महासैन्यैः समावृतः ॥१७॥
जघान नियुतान्दैत्यान्तीक्ष्णबाणैर्नखायुधैः। रथिनो वाहकान्[११] क्रोधी कोटिकोटिसहस्रशः ॥१८॥
वरुणो हि ततो भूय चाऽमर्षैः पूरितस्तदा[१२]। युयोध च समं दैत्यैरत्यल्पैर्सैनिकैर्युतः[१३] ॥१९॥
बध्वा पाशेन दैत्यान्स जघान मुद्गरैः शरैः। कोटिकोटिसहस्राणि पदातीन् रथिनः पुनः ॥२०॥
ततो वायुर्महातेजाः क्रोधाविष्टो ध्रुवं धनुः। युयोधादाय दितिजैः सार्धं सैन्यसमन्वितः[१४] ॥२१॥
कोटिकोटिरथान् दैत्यान् पातयामास[१५] रंहसा। जघान नियुतान्बाणै रथचक्रस्य नेमिभिः ॥२२॥
कुबेरो हि महाक्रोधी चापमादाय वै गदाम्। युयोध सह दैत्यैश्च रथस्थो गुह्यकावृतः ॥२३॥
जघान त्वरितं दैत्यान् कोटिकोटिसहस्रशः। बाणैः खड्गैर्गदापातैः स्यन्दनान् सारथीन्[१६] बहून् ॥२४॥
विश्वकर्मा ततो भूयः क्रोधयुक्तश्च सत्वरम्। युयोध दानवैः सार्द्धं मायावी मन्त्रसंयुतः ॥२५॥
दशकोटिसहस्राणि जघान दानवान्युधि। मन्त्रपूतैः शरैर्भूयः पदातीन् रथिनो भृशम् ॥२६॥
सोमो जघान दैत्यांश्च तुषारवर्षणैः शरैः। कोटिकोटिसहस्राणि नभस्स्थश्च महाहवे ॥२७॥
सूर्य्योऽपि तापवर्षैश्च जघान दानवान्बहून्। दशकोटिसहस्राणि गगनस्थो महायुधि ॥२८॥

---

त्यसपछि तेजस्वी अग्निले तत्काल दैत्यहरूमाथि अग्निको वर्षा गरे र तुरुन्त आग्नेयास्त्र प्रहार गरे। राक्षसका हजारौँ सेनाहरूलाई अस्त्रहरूको प्रहारबाट डढाए। रथीहरूका साथै करोडौँ रथ रलाखौँ दैत्यहरूलाई ध्वस्त पारे। त्यसपछि दण्ड लिएर यमराजले दानवहरूसित युद्ध गरे। त्यस महायुद्धमा उनले करोडौँ दैत्यहरूलाई मारे। फेरि उनले दण्ड प्रहार गरेर रथी तथा रथलाई धूलो-पिठो पार्दै कालजस्ता बाणहरूले राक्षसलाई मारे। नैर्ऋतले पनि एकचित्त हुँदै बाणले सहित भएको धनुष लिएर ठूला-ठूला दानवसैन्यका साथ खूबसित युद्ध गरे। उनले रिसाएर तीखा बाण र नङजस्ता अस्त्रहरूले चिथोरेर रथी र वाहनसहित दैत्यका करोडौँ सेनालाई मारे ॥१३-१८॥

रीसले क्रुद्ध भएका वरुणले पनि थोरै सैन्य साथमा लिएर दैत्यसेनाका साथ खूब लडे। वरुणले आफ्नो पाशले बाँधी मुग्राले हानेर, बाण हिर्काएर दैत्यका करोडौँ रथी र पैदल सैन्यहरूलाई मारे। त्यसपछि अत्यन्त रिसाएका महातेजस्वी वरुणले सेनासहित हातमा धनुष लिएर दैत्यका साथ युद्ध गरे। उनले युद्धमा ठूला-ठूला रथी, महारथी र करोडौँ दैत्यहरूलाई मार्नुका साथै रथका पाङ्ग्राका धारले लाखौँ दैत्यहरूलाई प्रहार गरे ॥१९-२२॥

महाक्रोधी कुबेरले धनु र गदा हातमा लिएर यक्षहरूलाई साथमा लिँदै रथमा चढेर दैत्यहरूसित लडे। उनले रथीहरूलाई साथमा लिएर रथमा बसी बाण, गदा र खड्गको प्रहारद्वारा करोडौँ दैत्यलाई मारे। त्यसपछि मायायुद्ध गर्न सिपालु विश्वकर्मा रीसले चूर भएर विचारपूर्वक दानवहरूसित लडे। लडाईंमा दश करोड दानवहरूलाई मन्त्रद्वारा संस्कार गरिएका बाणहरूले मारे। फेरि पनि उनले बारम्बार रथी तथा पैदलसैन्यमाथि जोडले प्रहार गरे ॥२३-२८॥

---

९. दैत्यानामुपरि, इति न.सं.पु.पाठः।
१०. महद्युद्धे, इति न.सं.पु.पाठः।
११. वाहनान्, इति न.सं.पु.पाठः।
१२. पूरितस्तनुः, इति न.सं.पु.पाठः।
१३. दैत्यैः स्वसैन्यर्लघुभिर्वृतः, इति न.सं.पु.पाठः।
१४ आदायायोधयद् दैत्यः सार्द्धं परिवारितः, इति न.सं.पु.पाठः।
१५ दैत्यानपातयन् स, इति न.सं.पु.पाठः।
१६ रथान् सारथिनो बहून्, इति न.सं.पु.पाठः।

ते दैत्यसैनिका[१७] विप्र शरणञ्च भयातुराः। हिरण्यकशिपोर्जग्मुः शेषा युद्धात्पराङ्मुखाः ॥२९॥
युद्धे पराङ्मुखान्वीरानालोक्य शरणागतान्[१८]। उवाच शुक्रमाचार्यं[१८क] हिरण्यकशिपुस्तदा ॥३०॥

हिरण्यकशिपुरुवाच

भो भार्गव[१९] चमूः सर्वा स्वल्पीभूता हि साम्प्रतम्। जीवय तां गुरो शीघ्रं पुनर्युद्धाय प्रेरय[२०] ॥३१॥
हिरण्याक्ष महाबाहो युद्धाय गच्छ सत्वरम्। ततो गच्छाम्यहं भ्रातश्चूर्णयामि सुरान् युधि ॥३२॥

स्कन्द उवाच

निशम्य वचनं शुक्रो हिरण्यकशिपोर्मुने। अजीवयत्तदा दैत्यान्पतितान् रणमूर्द्धनि ॥३३॥
कुशाम्भोमन्त्रपूतैश्च प्रषिच्य वर्म्मसु द्रुतम्। करैः सम्मार्ज्य नेत्राणि चोत्थितास्ते ततः सुखम् ॥३४॥
ते चापि युयुधुर्दैत्या बहुशस्त्रास्त्रसंयुताः। वाहनानि रथञ्चान्यं समास्थाय च सत्वरम् ॥३५॥
ततस्ते युयुधुर्दैत्या देवैः सह पुनर्द्विज। जघ्नुर्मिथो महासेनाः शस्त्रास्त्र[२१]क्षेपणैर्भृशम् ॥३६॥
सैंहिकेयो महीपुत्रो वज्रः शूली महासुरः। कपिलश्च गणश्चैव क्रोधवक्षा घनस्वरः ॥३७॥
प्रह्लादश्च निकुम्भश्च संह्रादः क्षितिकम्पनः। व्याघ्राक्षो भीमवेगश्च ह्यनुह्रादो बलिस्तथा ॥३८॥
धूम्रकेशश्च बाणश्च हरिश्मश्रुर्मधुस्तथा। कालश्च विप्रचित्तिश्च कालकेयो मुरस्तथा ॥३९॥
तारकः शङ्कुकर्णश्च शङ्खो वज्रश्च शम्बरः। हिरण्यकशिपुर्वीरो हिरण्याक्षोऽन्धकस्तथा ॥४०॥
त्रिपुराख्यो महावीर इत्यादयो महासुराः। कोटिकोटिरथैर्युक्ता युयुधुर्युगपत्तदा ॥४१॥
सामर्षाः धन्विनः दैत्या लौहकवचसंवृताः[२२]। ववृषुस्ते[२३] शरासारान्युगपच्च सुरोपरि ॥४२॥

---

त्यस महायुद्धमा आकाशमा बसेर चन्द्रमाले तुषारोजस्ता चीसा बाणहरूको प्रयोग गरी करोडौं दैत्यहरूलाई मारे। त्यस महायुद्धमा गर्मीको वर्षा गरेर आकाशमा रहेका सूर्यले पनि करोडौं दैत्यहरूलाई मारे।

हे अगस्त्य मुनि ! देवताको प्रहारबाट बचेका दैत्यका सेनाहरू डरले भागेर हिरण्यकशिपुको शरणमा गए। युद्धबाट भागेर आफ्नो शरणमा आएका आफ्ना सेनाहरूलाई देखेर हिरण्यकशिपुले आफ्ना गुरु शुक्राचार्य तथा भाइ हिरण्याक्षसित विचार विमर्श गर्न थाल्यो ॥२९-३०॥

हिरण्यकशिपुले भन्यो – हे पूज्य शुक्राचार्य ! युद्धमा मेरा धेरै सेनाहरू घटे। तपाईंले (मृतसञ्जीवनी विद्या प्रयोग गरेर) युद्धका लागि ती सेनाहरूलाई बचाइदिनुहोस्। हे पराक्रमी हिरण्याक्ष ! तिमी तुरुन्त लड्न जाऊ। हे भाइ ! म पनि जान्छु। युद्धमा देवताहरूलाई सखाप पारौं ॥३१-३२॥

कार्तिक स्वामीले भन्नुभयो – हिरण्यकशिपुको यस्तो कुरा सुनेर शुक्राचार्यले लडाईंमा मारिएका सबै दैत्यहरूलाई बचाइदिए। उनले मन्त्र उच्चारण गर्दै कुशले छातीमा पानी छर्कनासाथ ती राक्षसी सेनाहरू हातले आँखा मिच्दै जस्ताको तस्तै भएर उठे। त्यसपछि ती दैत्यहरू अनेक शस्त्र–अस्त्र लिएर अन्य वाहन तथा रथमा बसेर तुरुन्त युद्ध गर्न आए ॥३३-३५॥

हे अगस्त्य मुनि ! ती दैत्यसेनाले देवताहरूका साथ फेरि पनि युद्ध गरे र हरियारले परस्परमा हानाहान गरेर धेरै सेना मारे। राहु, भौमासुर, वज्र, शूली, कपिल, क्रोधवक्ष, गण, धवस्वर, प्रह्लाद, निकुम्भ, संह्राद, व्याघ्राक्ष, भीमवेग, अनुह्राद, बलि, धूम्रकेश, बाण, हरिश्मश्रु, मधु, काल, विप्रचित्ति, मुर, तारक, शङ्कुकर्ण, शङ्ख, वज्र, शम्बर, वीर, हिरण्यकशिपु, हिरण्याक्ष र अन्धकासुरले भयङ्कर युद्ध गरे। महावीर, त्रिपुरासुर आदि करोडौं ठूला–ठूला राक्षसहरू रथमा बसेर एकैचोटि युद्ध गर्न लागे रीसले क्रुद्ध भएका र कवच तथा धनुष हातमा लिएका दैत्यहरूले मिलेर एकै पटक देवताहरूमाथि बाणको वर्षा गरे ॥३६-४२॥

---

१७. दैत्यसैन्यास्ततो, इति न.सं.पु.पाठः।
१८. स्वशरण्यगान्, इति न.सं.पु.पाठः।
१८क. भार्गवायाशु, इति न.सं.पु.पाठः।
१९. भार्गव मे, इति न.सं.पु.पाठः।
२०. तां विभो, इति न.सं.पु.पाठः।
२१. शस्त्रास्त्रैः, इति न.सं.पु.पाठः।
२२. अमर्षैः पूरिता दैत्याः कवचिनो धन्विनस्ततः, इति न.सं.पु.पाठः।
२३. ववर्षुस्ते, इति न.सं.पु.पाठः।

ततस्तस्मिन्महायुद्धे देवाः शक्रपुरोगमाः । ववृषु[२४] र्बाणजालांश्च दैत्योपर्य्यनिशं पुनः ॥४३॥
अन्धीभूता दिशः सर्वाः कृष्णपक्षे यथा निशाः । परस्परं तदा जघ्नुः शस्त्रास्त्रैर्बहुभिर्मिथः ॥४४॥
ततश्चायोधनं विप्र बभौ ऋक्षैर्यथा निशा । शस्त्रास्त्रवर्षणाघातैरग्न्यस्त्रैर्द्योतिता[२५] दिशः ॥४५॥
तस्मिन्भूयः सुरान्दैत्या जघ्नुर्मिथो महाहवे । अग्न्यस्त्रैर्द्योतयन्तो हि क्षेत्रं खड्गैश्च तैः शरैः[२६] ॥४६॥
हिरण्यकशिपुस्तत्र हिरण्याक्षो महाबली । जघ्नतुश्च सुरान्युद्धे शस्त्रास्त्रैः शक्तिभिः पुनः ॥४७॥
ततो देवचमूर्भूयः पराङ्मुखा घटोद्भव । अर्दिता दैत्यशस्त्रास्त्रैर्बहुयुद्धपरिश्रमात् ॥४८॥
दिव्यवर्षसहस्राणि चायुतानि त्वहर्निशम् । कृत्वा युद्धं समं दैत्यैः श्रमवन्तोऽमरा भृशम् ॥४९॥
ततः शक्रोऽब्रवीज्जीवञ्चमूं दृष्ट्वा पराङ्मुखाम् । त्यक्त्वा युद्धञ्च दैत्यानां शस्त्रास्त्रैरर्दितां श्रमात् ॥५०॥

शक्र उवाच

दैत्यैः प्रमर्दिताः योधाः[२७] त्यक्त्वा युद्धं पराङ्मुखाः । त्रस्यमाना मुहुर्देवा आगतास्ते[२८] प्रदृश्यताम् ॥५१॥
किं कर्त्तव्यं गुरो चात्र योद्धव्यं वा पुनर्विभो । महान्मे संशयो जातो हृदये मे तदुच्यताम् ॥५२॥

बृहस्पति रुवाच

न योद्धव्यमिदानीञ्च श्रमं कृत्वा[२९] महाहवे । युष्माभिश्च न लभ्यन्ते सिद्धयोऽत्र पुरन्दर ॥५३॥
त्वया न शक्यते हन्तुं[३०] हिरण्यकशिपुः पुनः । रुद्रभक्तो महादैत्यो रुद्राल्लब्धवरोऽधुना ॥५४॥

---

त्यसपछि त्यस युद्धमा इन्द्र आदि गरिएका देवताहरूले दैत्यमाथि बारम्बार बाणहरूको वर्षा गरे । त्यतिखेर उनीहरूले परस्परमा थुप्रै शस्त्र–अस्त्रहरूले हानाहान गरे जसले गर्दा सबै दिशाहरू कृष्णपक्षको रात भैँ अँध्यारा भए। शस्त्र–अस्त्रका ठक्कर र संघर्षणले निस्किएका आगोका भिल्का भएको अस्त्रले दशै दिशालाई उज्यालो पाऱ्यो । नक्षत्रले रात जसरी सुशोभित हुन्छ, त्यो युद्ध त्यस्तै सुशोभित देखियो । त्यस महायुद्धमा दैत्यहरूले देवताहरूलाई परस्पर हानाहान गरे । बाण, तरवार र आग्नेयास्त्रले युद्धलाई चम्किलो बनाएको थियो । यसरी हिरण्यकशिपु र महाबली हिरण्याक्षले त्यस युद्धमा शस्त्रास्त्र र शक्तिद्वारा देवताका सेनाहरूलाई मारे ॥४३–४७॥

हे अगस्त्य मुनि ! त्यसपछि देवताका सेनाहरू पराङ्मुख भएर अथवा दैत्यका सहस्र अस्त्रहरूबाट थकित वा पीडित भएर फर्किए। दिव्य दश हजार वर्षसम्म दिनरात दैत्यहरूसँग युद्ध गरेर देवताहरू अत्यन्त थाके । त्यसपछि भाग्न लागेका, शस्त्र–अस्त्रले पीडित देवताका सेनालाई देखेर इन्द्रले बृहस्पतिसित भने ॥४८–५०॥

इन्द्रले भने – हे बृहस्पति ! दैत्यहरूले घायल तुल्याएका सेनाहरू युद्धमा हारेर डराउँदै यहाँ आएका छन्, हेर्नुहोस्। हे गुरु ! अब म के गरौँ ? अथवा फेरि लडौँ ? यस विषयमा मेरो हृदयमा सन्देह उत्पन्न भएको छ, मलाई सल्लाह दिनुहोस् ॥५१–५२॥

बृहस्पतिले भने – हे इन्द्र ! अहिले परिश्रम गरेर युद्धमा लड्नु ठीक हुँदैन किनभने तिमीहरूले यस पटक सिद्धि पाउँदैनौ। रुद्रबाट वर पाएको रुद्रभक्त हिरण्यकशिपुलाई अहिले मार्न सकिँदैन ॥५३–५४॥

---

२४. ववर्षुः, इति न.सं.पु.पाठः ।
२५. द्योतयद्, इति न.सं.पु.पाठः ।
२६. असिभिश्च शरैर्वीरा अग्न्यस्त्रैर्द्योतयन् युधि, इति न.सं.पु.पाठः ।
२७. सैन्याः, इति न.सं.पु.पाठः ।
२८. इहागताः, इति न.सं.पु.पाठः ।
२९. परिश्रमान्, इति न.सं.पु.पाठः ।
३०. न शक्यते प्रहर्तुं ते, इति न.सं.पु.पाठः ।

यदि मे सम्मतिर्मान्या गच्छेम[३१] हि शिवान्तिकम् । रुद्राय कथयेमाद्य चैतां[३२] वार्त्ताञ्च साम्प्रतम् ॥५५॥
यद्वदिष्यति भूतेशो वार्त्तमितां[३३] निशम्य च । करिष्यामो वयं तच्च स्थातव्यं भोऽत्र मा चिरम् ॥५६॥

स्कन्द उवाच

निशम्यैतद् गुरोर्वाक्यं तथ्यं संज्ञाय देवताः । यानेषु च समारोप्य बालान् स्त्रियो वसूनि च ॥५७॥
ययुर्यत्र महादेवः कामाख्यापीठमुत्तमम् । त्यक्त्वाऽमरावतीं क्षिप्रं सुराः शक्रादयो मुने ॥५८॥
दैत्येश्वरोऽसौ प्रसभं ससैन्यः शशास नाकं बहुकालमेव ।
सूर्येन्दुकार्यं कृतवान् स्वशक्त्या दिक्पालकास्ते दितिजा बभूवुः[३४] ॥५९॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे देवासुरसङ्ग्रामे देवानां पराजयो नाम त्रिंशत्तमोऽध्यायः ॥३०॥

---

हे इन्द्र ! मेरो कुरा मान्छौ भने हामीहरू शिवजीको शरणमा जाऔँ र यो सम्पूर्ण वृत्तान्त उहाँलाई सुनाऔँ । यो कुरा सुनेर भगवान् शङ्करबाट जे आज्ञा हुन्छ हामी त्यही गरौँला, यसमा विलम्ब नगरौँ ॥५५-५६॥

कार्तिक स्वामीले भन्नुभयो – बृहस्पतिको यस्तो भनाइ सुनेर यो ठीकै हो भन्ने जानेका इन्द्रादि देवताहरू यानमा बालक, पत्नी र धन राखेरस्वर्ग छोडेर जहाँ महादेव रहनुहुन्थ्यो, त्यसै कामाख्या पीठमा गए । यसरी देवताहरू स्वर्ग त्यागेर हिँडेपछि सैन्य र बलका भरमा युद्धमा विजय प्राप्त गर्ने त्यस दैत्यले धेरै समयसम्म स्वर्गमा राज्य गऱ्यो । तपस्याका प्रभावले गर्दा सूर्य-चन्द्रको काम पनि उसैले गऱ्यो । दश दिक्पालहरूको कार्य पनि दैत्यहरूले नै गरे ॥५७-५९॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गत हिमवत्खण्डको देवासुरयुद्धमा देवताहरूको पराजयनामक तीसौँ अध्याय पूर्ण भयो ।

---

३१. सम्मतो मे स्याद्वो गच्छाम, इति न.सं.पु.पाठः ।
३२. कथयिष्यामाद्य चैतद्वार्त्ताम्, इति न.सं.पु.पाठः ।
३३. भूतेश एतद्वार्ताम्, इति न.सं.पु.पाठः ।
३४. दैत्येश्वरोऽसौ प्रसभं ससैन्यो राज्यञ्चकाराब्दबहूनि नाकम् ।
भालेन्दुसूर्यौ तपसः स्वशक्त्या दिक्पालकान् दैत्यगणांश्च नूनम्, इति न.सं.पु.पाठः ।

# एकत्रिंशत्तमोऽध्यायः

भगवता वराहेण कृतो हिरण्याक्षवधः

स्कन्द उवाच

ततो देवाः सगन्धर्वा जग्मुर्यत्र शिवः स्थितः। उदासीना भयत्रस्ताः कामाख्यागह्वरे मुने ॥१॥
विविशुस्तत्र देवा वै ब्रह्मादयश्च कुम्भज । स्तुतिं कर्तुं गिरीशस्य देव्यालयं तदा ध्रुवम् ॥२॥
यत्र देवालये विप्र रहःस्थानं समागतान्। देवी ददर्श देवाँस्तान्विचार्य चैव सत्वरम् ॥३॥
क्रुद्धाऽभवत्तदा देवी रहःस्थाने समागतान्। दृष्ट्वा तान् विबुधान् क्षिप्रं शापं दातुं समुद्यता ॥४॥

देव्युवाच

रे रे देवा महामूढा अस्थानस्था न संशयः। अविवेकेन मे यूयं समागता निकेतने ॥५॥
अविचारेण यूयं भो इहागता ममालये। यतोऽविवेकिनो देवास्तस्माद् वृक्षा भवन्तु च ॥६॥

स्कन्द उवाच

ततः प्रवेपिता नम्रमुखाः देवाः सुदुःखिताः। श्रुत्वा शची महाशापं देव्या प्रार्थयदीश्वरीम् ॥७॥

शच्युवाच

नमो देव्यै महादेव्यै भवान्यै सततं नमः। रुद्राण्यै रौद्ररूपिण्यै तुभ्यं गौर्य्यै नमो नमः ॥८॥
पतिहीनाश्च[1] रुद्राणि तिष्ठाम हि कथं वयम्। वृक्षाश्चेत्स्वामिनो देवि लोकनिन्द्या न संशयः ॥९॥
न कर्त्तव्यास्त्वया वृक्षा देवाः सर्वे महेश्वरि। याचामहे[2] वरञ्च त्वामस्मासु त्वं कृपां कुरु[3] ॥१०॥

देव्युवाच

यद्येवं याचसे देवि मयि भक्तिपरायणे। लोकनिन्दाभयात् स्त्रीणां यत्तस्माच्च करोम्यहम् ॥११॥
एकैकांशैः सुरा वृक्षा भवन्तु मत्प्रसादतः। गच्छेन्द्रेण समं देवि रमस्व त्वं यथासुखम् ॥१२॥

---

## अध्याय- ३१

भगवान् वराहद्वारा हिरण्याक्षको वध

कार्तिक स्वामीले भन्नुभयो – त्यसपछि डराएर उदासीन हुँदै देवताहरू गन्धर्वहरूलाई साथमा लिएरजहाँ भगवान् शिव रहनुहुन्थ्यो, त्यही कामाख्या नामको गुफामा गए। हे अगस्त्य मुनि ! त्यसपछिभगवान् शङ्करको स्तुति गर्नका लागि ब्रह्मा, इन्द्र आदि देवताहरू देवीको मन्दिरभित्र प्रवेश गरे। देवीले आफ्नो मन्दिर रहेको एकान्तस्थलमा आउन लागेका देवताहरूलाई देख्नुभयो। त्यसपछि तुरुन्त उहाँले विचार गर्नुभयो। त्यस एकान्तस्थलमा आउन लागेका देवताहरूलाई देखेर भगवती अत्यन्त क्रुद्ध हुनुभयो र ती देवताहरूलाई सराप दिनका लागि तत्पर हुनुभयो ॥१-४॥

देवीले भन्नुभयो – आफ्नो स्थानमानबस्ने हे मूर्ख देवता हो ! तिमीहरू केही विचारै नगरीयसरी मेरो घरमा आयौ। विवेकहीन हे देवता हो ! तिमीहरू केही नसोची मेरो घरमा आयौ। त्यसैले तिमीहरू रुख हुनुपरोस् ॥५-६॥

कार्तिक स्वामीले भन्नुभयो – यस्तो सराप सुनेर मलिन मुख लगाएका देवताहरूले अत्यन्त दुःखी भए र काँप्दै भगवती देवीको प्रार्थना गरे ॥७॥

इन्द्राणीले भनिन्– हे महादेवी ! हे भवानी ! हजुरलाई बारम्बार नमस्कार छ। रुद्ररूप लिने हे रुद्राणी ! हे गौरी ! हजुरलाई बारम्बार नमस्कार छ। हे रुद्राणी ! हामी हाम्रा स्वामी विना कसरी रहन सक्छौं ? देवताहरू रुख हुनुपर्‍यो भने दुनियाँले हाम्रो पनि निन्दा गर्छन्, यसमा कुनै शङ्का छैन हे महेश्वरी ! हजुरले सराप दिई देवताहरूलाई रुख बनाउनुभयो भने यो राम्रो हुँदैन। यदि ममाथि हजुरको अनुग्रह हुन्छ भने म यही वर हजुरसँग माग्दछु ॥८-१०॥

देवीले भन्नुभयो – हे इन्द्राणी ! तिमीले ममाथि भक्ति राखेर लोकनिन्दाको डरसँग सम्बद्ध यस्तो वर माग्छ्यौ भने हुन्छ, म त्यसै गर्छु। मेरो अनुग्रहले गर्दा देवताहरू एक अंशका रूपमा मात्र वृक्ष भएर यहाँ रहनेछन्। तिमी इन्द्रसँगै जाऊ र आनन्दपूर्वक क्रीडा गर ॥११-१२॥

---

१. पतिहीनेन, इति न.सं.पु.पाठः। २. इति याचे, इति न.सं.पु.पाठः। ३. त्वां त्वं कृपयसि मे ध्रुवम्, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

ततः प्रभृति देवांशा भवेयुस्तरवो मुने। वटं जानीहि धातारं हरिं पिप्पलकं तथा ॥१३॥
उदुम्बरं सहस्राक्षं बिल्ववृक्षं तथा शिवम्। कदम्बञ्च तथा सूर्यं सर्वान्वृक्षान्सुरांशकान् ॥१४॥
ततो देवा महेशानं स्तुत्वा नेमुः पुनः पुनः। व्यज्ञापयन् तदेशानं[४] परिभवं तदात्मनः ॥१५॥

देवा ऊचुः

ईशान सर्व सर्वेश रक्ष रक्ष समागतान्[५]। शरणं सङ्गतानस्मान् युद्धे पराजितान् विभो ॥१६॥
हिरण्यकशिपू राज्यञ्चकार चाऽमरावतीम्। युद्धेऽस्माँस्तत्र विद्राव्य लुण्ठितं नन्दनं वनम् ॥१७॥
किं कुर्मः क्व च[६] गच्छाम, इति कृत्वा हृदीश्वर। पादुकायां तवेशान आगताः शरणं विभो ॥१८॥
भवतः सुवरं लब्ध्वा हिरण्यकशिपुर्बली। विद्राव्याऽस्मान्युधि स्वर्गात्सुखं राज्यं करोति सः[७] ॥१९॥

शर्व उवाच

अवश्यं विबुधास्तेन प्राप्तव्यं तपसः फलम्। तपसोऽन्तेऽस्य भगवान्वधं विष्णुः करिष्यति ॥२०॥
लौहशस्त्रैर्न वध्याश्च दैत्यास्ते तापसौजसः। अस्थ्युद्भूतैश्च शस्त्रास्त्रैर्वध्याः स्युस्ते न संशयः ॥२१॥
अन्तः पूर्वोत्तरे शैले दूरे द्विपञ्चयोजने। तपस्वी सुन्दरे शैले दधीचिः स तपस्यति[८] ।२२॥
अर्चति सुन्दरीं देवीं सर्ववन्द्यां हि किंशुकैः। सुन्दराख्ये महातीर्थे स स्नात्वोपचितैः स्तवैः ॥२३॥
गत्वा तत्र तदस्थीनि याच्यन्तां तं सुरोत्तमाः। तदस्थ्युद्भवाच्छस्त्रात्ते पलायिष्यन्ति पीडिताः[९] ॥२४॥

---

कार्तिक स्वामीले भन्नुभयो – त्यसपछि देवताका अंशहरू वृक्ष भए। तीमध्ये ब्रह्माजीलाई वर र भगवान् विष्णुलाई पिप्पल भन्ने बुभ्नुहोस्। यस्तै इन्द्रलाई डुम्री, शिवजीलाई बेल र सूर्यलाई कदमको रुख भनेर बुझ्नुहोस्। यसरी नै सबै देवताहरूका अंशहरू अन्य अन्य वृक्ष हुन् भन्ने ठान्नुहोस्। त्यसपछि देवताहरूले भगवान् शङ्करलाई आफू पराजित भएर आएको कुरा विन्ती गर्दै उहाँको बारम्बार तुति गर्दै नमस्कार गरे ॥१३-१५॥

देवताहरूले भने – हे ईशान ! हे शर्व ! हे सर्वेश्वर ! हामीहरू युद्धमा पराजित भएर यहाँ आएका छौं। हजुरको शरणमा परेका हामीहरूको रक्षा गर्नुहोस्। हिरण्यकशिपुले अमरावतीमा राज्य गरेको छ र हामीलाई युद्धमा परास्त गरेर उसले नन्दन वन पनि लुटेको छ। हे ईश्वर ! हे ईशान ! हामीहरू अब के गरौं ? कहाँ जाऔं ? भन्दै हजुरका चरण-शरणमा आएका छौं। हजुरको अनुग्रह प्राप्त गरी पराक्रमी बनेको हिरण्यकशिपुले युद्धमा हामीलाई जितेर आनन्दपूर्वक स्वर्गमा शासन गरिरहेको छ ॥१६-१९॥

भगवान् शङ्करले भन्नुभयो – हे देवता हो ! हिरण्यकशिपुले तपस्याको फल अवश्य पाउनुपर्थ्यो, पायो। तपस्याको फल सकिएपछि भगवान् विष्णुले उसलाई मार्नुहुनेछ। तपस्याका कारण शक्तिशाली बनेका ती राक्षसहरू फलामको हतियारले मर्दैनन्। तसर्थ हाडबाट बनाएको शस्त्र र अस्त्रले मात्र तिनीहरूको वध हुन्छ, यसमा शङ्का छैन। यहाँबाट ५२ योजन पर पूर्वोत्तर क्षेत्रमा रहेको सुन्दर नामक पहाडको मध्यभागमा दधीचि नामका तपस्वीले तपस्या गरिरहेका छन् ॥२२॥

हे देवता हो ! सुन्दर नामक महातीर्थमा स्नान गरेर दधीचि ऋषि विभिन्न पूजासामग्री, पलाशपुष्प तथा अनेक स्तुतिले संसारकी वन्दनीय सुन्दरी देवीको पूजा गरिरहेका छन्, तिमीहरू त्यस स्थानमा गएर ती ऋषिसँग उनका हाडहरू माग। तिनै ऋषिको हाडबाट बनेका शस्त्रबाट मात्र राक्षसहरू भाग्नेछन् ॥२३-२४॥

---

४. विज्ञापयत्तदीशानम्, इति न.सं.पु.पाठः।
५. हीहागतान्, इति न.सं.पु.पाठः।
६. किं कुर्वामः क्व, इति न.सं.पु.पाठः।
७. राज्यञ्चकार सः, इति न.सं.पु.पाठः।
८. सुन्दराख्ये तपस्वी वै दधीचिर्नाम तप्तवान्, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

श्रुत्वा तद्वचनं देवा जग्मुस्तत्र[१०] घटोद्भव। दधीचिं ददृशुर्यत्र[११] तप्तवन्तं सुदुष्करम् ॥२५॥

उपागत्य सुरास्तत्र दधीचिं मुनिसत्तमम्। शिरोभिस्ते प्रणम्याऽऽदौ प्रोचुर्मधुरया गिरा[१२] ॥२६॥

देवा ऊचुः

नमस्ते मुनये तुभ्यं[१३] सर्वसत्त्वानुकम्पिने। शरण्यानक्ष रक्षास्मान् सङ्कटस्थान्महामुने ॥२७॥

दधीचिरुवाच

स्वागतास्त्रिदशा यूयं किमर्थं यूयमागताः[१४]। सङ्कटस्थाः कथं देवाः कस्माच्च वदताऽत्र मे ॥२८॥

देवा ऊचुः

हिरण्यकशिपू राज्यञ्चकार चाऽमरावतीम्। विद्राव्याऽस्मन्भृशं युद्धे त्रिंशत्कोटिरथैर्वृतः ॥२९॥

इत इहाऽऽगता दान्त ज्ञात्वा रुद्रमुखाच्च्युतम्। त्वां प्राणमपि[१५] दातारं परोपकारिणं वयम् ॥३०॥

अस्थीनि तव दान्त त्वां याचितुं वयमागताः। यदि कृपा तवाऽस्मासु स्वर्गोऽस्मभ्यं[१६] प्रदीयताम् ॥३१॥

दधीचिरुवाच

एकस्याऽर्थे बहून् हत्वा लभते[१७] बहु पातकम्। बह्वर्थे लभते हत्वा चैकं न पातकं जनः[१८] ॥३२॥

शरीरं भौतिकञ्चैतत् क्षणिकं श्रूयतां[१९] सुराः। दास्याम्यहमिदं नूनं युष्मदुद्धरणाय च ॥३३॥

---

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! शङ्करको यस्तो भनाइ सुनेर देवताहरू अत्यन्त दुःखका साथ तपस्या गरिरहेका दधीचि मुनि भएको स्थानमा गए। देवताहरूले मुनिश्रेष्ठ दधीचिको समीपमा गई सर्वप्रथम उनलाई नमस्कार गरे। त्यसपछि मधुर वचनद्वारा ऋषिलाई भनन थ्थे ॥२५-२६॥

देवताहरूले भने – हे आर्य ! सम्पूर्ण प्राणीहरूलाई कृपा गर्ने मुनिलाई नमस्कार छ। हे महामुने ! सङ्कटमा परेर हजुरको शरणमा आएका हामीहरूको रक्षा गर्नुहोस् ॥२७॥

दधीचिले भने – हे देवता हो ! तिमीहरूलाई स्वागत छ। तिमीहरू यहाँ किन आयौ ? र तिमीहरू कसरी सङ्कटमा पऱ्यौ ? मलाई सबै कुरा भन ॥२८॥

देवताहरूले भने – तीस करोड रथले युक्त भएको हिरण्यकशिपुले महायुद्धमा हामीलाई परास्त गरी अमरावतीमा शासन गरिरहेको छ। भगवान् शङ्करको मुखबाट तपाईं उदार हुनुहुन्छ भन्ने कुरा थाहा पाएर परोपकारका निमित्त आफ्नो जीवन पनि दिन सक्ने हजुरको शरणमा हामी आएका छौं। हे दाता ! हजुरसँग हामी हजुरको शरीर का हाड माग्दछौं। यदि हजुर फेरि हामीलाई स्वर्ग दिलाउने कृपा गर्नुहुन्छ भने तपाईं आफ्ना हाडहरू हामीलाई दिनुहोस् ॥२९-३१॥

दधीचिले भने – एक जनाका लागि धेरैलाई मार्दा ठूलो पाप हुन्छ तर धेरैका लागि एउटलाई मार्दा कुनै पाप हुँदैन। हे देवता हो ! पृथ्वी, जल, तेज, वायु र आकाश यी पञ्चमहाभूतले बनेको यो शरीर क्षणिक र नश्वर छ। त्यसैले तिमीहरूको उद्धारका निमित्त म तिमीहरूलाईआफ्नो शरीर दिन्छु ॥३२-३३॥

---

९. पलायिष्यन्ति साम्प्रतम्, इति न.सं.पु.पाठः। १०. यत्र, इति न.सं.पु.पाठः। ११. तत्र, इति न.सं.पु.पाठः।
१२. प्रोचुर्मधुरयन्मुनिम्, इति न.सं.पु.पाठः। १३ चार्य, इति न.सं.पु.पाठः। १४. समिहागताः, इति न.सं.पु.पाठः।
१५. जीवमपि, इति न.सं.पु.पाठः। १६. स्वर्गालये, इति न.सं.पु.पाठः। १७. एकस्यार्थं बहून् हत्वा लभेच्च, इति न.सं.पु.पाठः।
१८. बहूनां हेतवे हत्वा नैकं लभेच्च पातकम्, इति न.सं.पु.पाठः।
१९. पाञ्चभौतिकदेहोऽयं क्षणविध्वंसनः सुराः, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

इत्युक्त्वाऽसौ दधीचिश्च मोक्षदं तीर्थसुन्दरम्। गत्वा तत्र हि योगेन पञ्चत्वं प्राप्तवान्[२०] ध्रुवम् ॥३४॥
ततस्त्वष्टा तदस्थीनि प्रतिगृह्य च साम्प्रतम्। प्रधौतवांश्च तत्तीर्थे शस्त्रास्त्राणि चकार च ॥३५॥
गदां पाशमसौ तथा वज्रं शक्तिं वाणांश्च[२१] मुद्गरम्। ब्राह्मं पाशुपतञ्चैव वैष्णवञ्च चकार ह ॥३६॥
ततो ब्रह्मा च संस्कृत्य देवेभ्यो हि ददौ तदा। ब्राह्मं स्वयं गृहीत्वा च समन्त्रञ्च पृथक् पृथक् ॥३७॥
पाशुपतं शिवायादौ विष्णवे वैष्णवं पुनः। इन्द्राय च ददौ वज्रं मह्यञ्च शक्तिमुत्तमाम् ॥३८॥
शस्त्रास्त्राणि समादाय सस्नुस्ते तीर्थसुन्दरे। ततो देव्यालये गत्वा नमश्चक्रुश्च[२२] सुन्दरीम् ॥३९॥
संस्तुत्य बहुभिः श्लोकैः परिक्रम्य पुनः पुनः। प्रार्थयन्ति स्म तां देवीं स्वर्गस्थानं वरञ्च ते ॥४०॥
लब्ध्वा वरान् ततो देव्या ययुः स्वर्गं मुदा सुराः[२३]। सिंहनादं तदा चक्रुर्वाद्यानि ज्यास्वनं तथा ॥४१॥

स्कन्द उवाच

ततः शुक्रश्च मेधावी तत्सर्वं ज्ञातवान्ध्रुवम्। लब्धवन्तो वरं देव्याः शस्त्राणि चेति ते सुराः[२४] ॥४२॥

शुक्र उवाच

हिरण्यकशिपो दैत्याः शृणुध्वं मे वचांसि च। लब्धवराः सुराः देव्याः हर्षात्समागता इह ॥४३॥
सामर्षाश्चाऽऽगता देवा वर्णिनोऽस्थ्युद्भवायुधाः। स्थातव्यं नात्र भो दैत्याः पलायध्वञ्च साम्प्रतम् ॥४४॥
भगवत्या वरं लब्ध्वा[२५] यतो देवाश्च सायुधाः। हनिष्यन्ति च नः सैन्यमवश्यं[२६] दानवाः खलु ॥४५॥
सङ्ग्रामे पतितानां नो न भवेद्धि बलं यतः। न मन्त्रो नौषधञ्चात्र न बुद्धिर्न पराक्रमः ॥४६॥

---

कार्तिक स्वामीले भन्नुभयो – यति भनेर दधीचि ऋषिले मोक्षदायक सुन्दर तीर्थमा गएर योगसमाधिद्वारा आफ्नो शरीर त्याग गरे। त्यसैबेला त्वष्टाले उनका हाडहरूलाई संकलन गरेर त्यसै तीर्थमा पखाले अनि त्यसबाट विभिन्न शस्त्र–अस्त्रहरू तयार गरे। उनले गदा, पाशो, वज्र, शक्ति, बाण, मुग्रो, ब्रह्मास्त्र, पाशुपतास्त्र तथा वैष्णवास्त्र जस्ता हतियारहरू तयार गरे। ब्रह्माजीले संस्कार गरेर सबै अस्त्रहरू देवताहरूलाई दिनुभयो। उहाँले ब्रह्मास्त्र आफूले लिएर मन्त्रपूर्वक त्यसको छुट्टाछुट्टै संस्कार गर्नुभयो। त्यसपछि उहाँले पहिले शिवजीलाई पाशुपतास्त्र, विष्णुलाई वैष्णवास्त्र, इन्द्रलाई वज्र र म अर्थात् कार्तिकेयलाई उत्तम शक्ति नाम गरेको अस्त्र दिनुभयो ॥३४–३८॥

शस्त्र–अस्त्रहरू लिएपछिदेवताहरूले सुन्दर नाम गरेको तीर्थमा स्नान गरे। त्यसपछि देवीको मन्दिरमा गएर उनीहरूले सुन्दरी देवीको स्तुति गरे। उनीहरूले धेरै श्लोक उच्चारण गरी देवीको स्तुति गर्नुका साथै बारम्बार परिक्रमा गरे र उहाँसँग स्वर्गप्राप्तिका लागि वर पनि मागे। वर प्राप्त गरेपछि देवताहरू तत्काल स्वर्गमा गएर सिंहनाद गरे। त्यसपछि धनुष टङ्कार गरेर बाजाहरू बजाए ॥३९–४१॥

कार्तिक स्वामीले भन्नुभयो – त्यसपछि प्रतिभाशाली शुक्रले देवताहरूले देवीबाट वर पाउनुका साथै शस्त्र–अस्त्र प्राप्त गरेका सम्पूर्ण कुरा थाहा पाए ॥४२॥

शुक्रले भने – हे हिरण्यकशिपु ! हे दैत्य हो ! मेरो कुरा सुन। देवीबाट वर प्राप्त गरेर देवताहरू प्रसन्न हुँदै यहाँ आएका छन्। हे दैत्य हो ! देवताहरू ऋषिको हाडबाट निर्मित हतियार लिएर रिसाउँदै यहाँ आएका छन्। अब हामीहरू यहाँ बस्नु उचित हुँदैन, भागिहालौँ ॥४३–४४॥

हे दानव हो ! देवताहरूले देवीबाट वर प्राप्त गरेर हतियार समेत प्राप्त गरेका छन्। त्यसैले उनीहरूले हाम्रा सेनाहरूमाथि अवश्य प्रहार गर्नेछन्। उनीहरूसँग युद्ध गर्न दानवहरूसँग सामर्थ्य हुँदैन। त्यहाँ मन्त्र, औषधि, बुद्धि तथा पराक्रम आदिले पनि काम गर्दैन ॥४५–४६॥

---

२०. आप्नुयाद, इति न.सं.पु.पाठः।
२१. पाशं वज्रं शक्तिं शरांश्च मुद्गरम्, इति न.सं.पु.पाठः।
२२. ववन्दुस्तत्र, इति न.सं.पु.पाठः।
२३. ततो वरान्प्रलब्धास्ते ययुः स्वर्गं हि साम्प्रतम्, इति न.सं.पु.पाठः।
२४. शस्त्रास्त्राणि च तत्तथा, इति न.सं.पु.पाठः।
२५. देव्या वरं समालब्ध्वा, इति न.सं.पु.पाठः।
२६. सैन्यं नश्चावश्यम्, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

तस्मिन्कालेऽमराः सर्वे रुरुधुरमरावतीम्। ववृषुश्च शरासारान् शश्वत्सम्प्रेषितैः शरैः[२७] ॥४७॥
अन्धीभूते महायुद्धे न पश्यन्ति[२८] स्म ते मिथः। जघानेन्द्रश्च वज्रेण कोटिकोटींश्च[२९] दानवान् ॥४८॥
देवाजघ्नुश्च तच्छस्त्रैः कोटिकोट्यसुरांस्तथा। दिक्पाला दानवान् जघ्नुः पातयन्तो हि रंहसा[३०] ॥४९॥
ततो दैत्यमहासेनाः शीघ्रं त्यक्त्वाऽमरावतीम्। दैत्यराजं पुरोधाय स्वाश्रमं दुद्रुवुस्तदा ॥५०॥
तच्छस्त्रास्त्रैरसह्यैस्तानर्दितान् भयविह्वलान्[३१]। हिरण्याक्षोऽब्रवीच्छीघ्रं व्रजन् मार्गे हि[३२] दानवान् ॥५१॥

हिरण्याक्ष उवाच

भो भो दैत्या महाशूरा हिरण्यकशिपो बले। अधर्मस्थे वयञ्च स्युः सङ्ग्रामाच्च पराङ्मुखाः ॥५२॥
न प्रेक्षेऽहं स्वकं राज्यमुपालम्भभयान्वितः। विना युद्धं पुनर्दैत्याः कठोरं सह विष्णुना ॥५३॥
अद्याहं सह सैन्यैश्च हनिष्यामि जनार्दनम्। गत्वा यत्रास्थितं गूढं प्रेक्षे राज्यं स्वकं ततः ॥५४॥

स्कन्द उवाच

अङ्गीकृत्य तदेत्येवं हिरण्याक्षो महासुरः। ययौ यत्र महाविष्णुः कौशिक्याश्च तटे स्थितः ॥५५॥
वराहपर्वते कूटे वराहरूपधृग् विभुः। तत्र गत्वाशु दैत्येशः सिंहनादं ननाद च ॥५६॥
श्रुत्वा विष्णुश्च तन्नादं दध्मौ शङ्खं महास्वनम्। शङ्खस्वनैः श्रवापेयैर्मूर्छितः क्रोधतोऽसुरः ॥५७॥
युयुधतुर्म्महायुद्धं विष्णुदैत्यौ परस्परम्। दिव्यवर्षशतं पूर्णं शस्त्रास्त्रक्षेपणैर्मुने ॥५८॥

---

कार्तिक स्वामीले भन्नुभयो – त्यसै समयमासम्पूर्ण देवताहरूले अमरावतीलाई घेरा हाले र असुरहरूमाथि धेरै बाण वर्साए। बाणको वर्षाले गर्दा युद्धस्थलको चारैतिर अन्धकार भयो। उनीहरूले एक अर्कालाई देख्न छोडे। इन्द्रले करोडौँ दानवहरूलाई वज्रले हिर्काए। अन्य देवताहरूले पनि आफ्ना हतियारले करोडौँ करोड राक्षसहरूलाई हाने। वायुवेगले ढाक्दै दिक्पालहरूले पनि दानवहरूमाथि प्रहार गरे। त्यसपछि दैत्यको ठूलो सेना तत्काल स्वर्गलाई छोडेर हिरण्यकशिपुलाई अगाडि लगाउँदै आफ्नो वासस्थानतिर दौडिए। सहन नसकिने शस्त्र–अस्त्रहरूले गर्दा अत्यन्त पीडित भएर डराएकखा दैत्यहरूलाई बाटमा हिँड्दा–हिँड्दै हिरण्याक्षले भन्यो ॥४७–५१॥

हिरण्याक्षले भन्यो – हे महाशूर दैत्य हो ! हिरण्यकशिपुको सेनाले धर्मको पथ अवलम्बन नगर्दा हामी युद्धमा पराजित भयौँ। हे दैत्य हो ! विष्णुसँग कठोर किसिमको युद्ध नगरीकन तिरस्कृत र डरपोक भएर म आफ्नो राज्यमा फर्किएर जान्नँ। आज म सेनासहित गुप्तरूपले बसेको जनार्दनलाई मार्दछु। त्यसपछि आफ्नो राज्यलाई हेर्नेछु ॥५२–५४॥

कार्तिक स्वामीले भन्नुभयो – यही कुरा स्वीकार गरेर हिरण्याक्ष नाम गरेको दैत्य तत्काल जहाँ विष्णु बस्नुभएको थियो त्यही कौशिकीको तटमा गयो ॥५५॥

भगवान् विष्णु वराहपर्वतको टपुमा वराहको रूप धारण गरेर बस्नुभएको थियो। त्यो हिरण्याक्ष त्यसै पर्वतमा गएर सिंह जस्तै गर्जन गऱ्यो ॥५६॥

हिरण्याक्षको त्यस्तो सिंहनाद सुनेर विष्णुले ठूलो स्वरले शङ्ख बजाउनुभयो। सुन्नै नसकिने शङ्खको आवाजले गर्दा रिसाएको त्यो दैत्य मूर्च्छा पऱ्यो। हे मुनि ! दिव्य सय वर्षसम्म शस्त्र–अस्त्रहरू हानाहान गरेर विष्णु र हिरण्याक्ष दैत्यले आपसमा ठूलो युद्ध गरे ॥५७–५८॥

---

२७. ववर्षुश्च शरासारान् शश्वत्संप्रेरितैः शरैः, इति न.सं.पु.पाठः।
२८. आलक्ष्यन्ति, इति न.सं.पु.पाठः।
२९. कोटिशः, इति न.सं.पु.पाठः।
३०. वायुवेगेन पातयन्, इति न.सं.पु.पाठः।
३१. स्तानर्दमानान्भयावहान्, इति न.सं.पु.पाठः।
३२. पथि व्रजंश्च, इति न.सं.पु.पाठः।

हिरण्याक्ष उवाच

मत्तो भयादिहागत्य तिष्ठसि त्वं रहो हरे। वराहरूपमास्थाय विविक्ते निर्ज्जने गिरौ ॥५९॥
न घ्नन्ति दानवाः कोलं रहसि वा पशुं युधि। इति कृत्वा हृदा विष्णो सुखं तिष्ठसि रूपधृक्[33] ॥६०॥
इदानीं सान्वयं त्वां वै हनिष्यामि च सत्वरम्। हत्वा निष्कण्टकं राज्यं भोक्ष्यामि रुद्रवत्सुखम् ॥६१॥

वराह उवाच

किं वल्गसे महामूढ मिथ्यावादं ममाग्रतः। पातालं ते प्रयास्यन्ति मिथ्यावादं वदन्ति ये ॥६२॥
नाहं भयाच्च ते मूढ वराहरूपमास्थितः। जगतां धारणार्थाय लोकसंरक्षणाय च ॥६३॥

स्कन्द उवाच

इत्युक्त्वा च महाविष्णुर्वराहरूपधृक् तदा। कोटिसूर्यप्रतीकाशं शीघ्रञ्चक्रं समाददे ॥६४॥
ततो युद्धे वराहोऽसौ चक्रेण सूर्यवर्च्चसा। शिरो जहार कायात्तद्धिरण्याक्षस्य सत्वरम् ॥६५॥

ततश्च देवा सुमुखं हि चक्रुर्विनाश्य शत्रुं सततं सुराज्यम्।
सहस्रवर्षं त्रिदिवे च शक्रो मुमोद देवैः सह विप्र शच्या ॥६६॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे हिरण्याक्षवधो नामैकत्रिंशोऽध्यायः ॥३१॥

---

हिरण्याक्षले भन्यो – हे हरि ! मदेखि डराएर सुँगुरको रूप धारण गरी मानिस नभएको यस एकान्त वनमा आएर बसेको छस्। हे विष्णु ! दानवहरूले एकान्तमा बस्ने पशु अथवा सुँगुरलाई मार्दैनन् भन्ने सोचेर वराहको रूप धारण गरी तँ आनन्दपूर्वक बसेको छस्। अब म सपरिवार तँलाई मार्छु र त्यसपछि निष्कण्टक राज्य गरेर शिवले जस्तै सुखभोग गर्नेछु ॥५९–६१॥

वराह अवतारधारी विष्णुले भन्नुभयो – हे महामूर्ख ! मेरो अगाडि किन झूठो बकबक गर्छस् ? जो यसरी बकबक गर्छन्, तिनीहरू सबै पाताल पुग्छन्। हे मूर्ख ! तँसँग मैले वराह रूप लिएको होइन, संसारलाई धारण गरेर संसारको रक्षा गर्न नै मैले यो रूप धारण गरेको हुँ ॥६२–६३॥

कार्तिक स्वामीले भन्नुभयो – इति भनेर वराह रूप लिएका भगवान् विष्णुले तत्काल करोडौँ सूर्यसमान तेजिलो चक्र ग्रहण गर्नुभयो। त्यसपछि युद्धमा वराह रूपधारी विष्णुले सूर्यजस्तो तेजिलो चक्रद्वारा हिरण्याक्षको शिर छेदन गर्नुभयो। हे विरूपाक्ष ! हिरण्याक्ष मरेपछि देवताहरूले हँसिलो मुख लगाए। कुनै शत्रु नभएको हुँदा इन्द्रले इन्द्राणी तथा देवताहरूका साथमा रहेर हजार वर्षसम्म आनन्दपूर्वक स्वर्गको राज्यभोग गरे ॥६६॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गत हिमवत्खण्डको देवासुरयुद्धमा हिरण्याक्षको वध नामक एकतीसौँ अध्याय पूर्ण भयो।

पराम्बा वाग्वादिनी भगवतीको असीम अनुकम्पाबाट पोरकनी पाल्पा निवासी पतिव्रताशिरोमणि स्वर्गीय माताश्री दिव्यलक्ष्मी ढकाल र सज्जनमुकुटमणि स्वर्गीय पिताश्री चूडामणि ढकालका कनिष्ठ पुत्र नेपाल संस्कृत विश्वविद्यालय सेवा आयोगका अध्यक्ष प्रा. डा. वेणीमाधव ढकालद्वारा गरिएको महर्षि वेदव्यासरचित स्कन्दमहापुराणअन्तर्गत हिमवत्खण्डको अभिनव सम्पादन एवं नरहरिनामक नेपाली भाषानुवादमा देवासुरसङ्ग्रामप्रकरणम् प्रकरण पूरा भयो।

---

३३. कोलधृक्, इति न.सं.पु.पाठः।

# हिमवत्खण्ड

## (नेपाली अनुवादसहित मूलपाठ)

## प्रकरण- ३

## कामाख्या-कौशिकी-गण्डकी प्रकरण

(अध्याय ३२ - ६२)

यावत्योऽद्रिदरीभवाः सुललिता नद्यो हिमाद्रेरधः-
शैलानाञ्च समन्ततो घटज ताः पूतप्रवाहाः सदा।
सप्तानाञ्च तटेषु सङ्गमशुभाः श्रीगण्डकीनां जलै-
रन्यासां सलिलैः समं शिवकरैस्तीर्थानि पुण्यानि वै॥

*(हिमवत्खण्ड, प्रकरण - ३, अ. - ५६, श्लो. - २५)*

अर्थ-

हिमालयको गुफाबाट निस्किएका कञ्चन जल भएका जति पनि सुन्दर नदीहरू छन्, पर्वतका चारैतर्फ फैलिएका ती नदीहरूको प्रवाह पवित्र छ। सप्तगण्डकीलाई पूर्णता दिन यिनका तटमा मिल्न आउने अरू सम्पूर्ण नदीहरू पनि अत्यन्तै पवित्र र कल्याणदायक हुन्छन्। यी सबै नदीहरू अक्षय पुण्यदायक तीर्थ हुन्॥२५॥

# द्वात्रिंशोऽध्यायः

सुन्दराचलमहिमा

अगस्त्य उवाच

भगवञ्छ्रोतुमिच्छामि भूयो ब्रह्मविदांवर। सकलं वद मे देव त्वद्भक्ताय च साम्प्रतम् ॥१॥
कामरूपस्य माहात्म्यं सुन्दरीपर्वतस्य च। वराहाद्रेश्च माहात्म्यं कौशिक्याश्चोद्भवं तथा ॥२॥

स्कन्द उवाच

शृणु भक्त प्रवक्ष्यामि माहात्म्यं सुन्दरीगिरेः। तच्छ्रवणात्प्रपूयन्ते देहास्तत्तत्त्वसंस्थिताः ॥३॥
ब्रह्मणा च कृतः शैलोऽ१ यदा सौन्दर्यधातुना। नानारत्नसमाकीर्णः श्रेयस्तीर्थाग्रशेखरः२ ॥४॥
सर्वद्रुमलताकीर्णो नानापुष्पोपशोभितः३। हिरण्यवल्लरीयुक्तः सर्वर्तुसम्भवैः फलैः ॥५॥
राजमानो महाशैलः सर्वसौन्दर्यशोभितः। सर्वलोकमनोहारी नानारत्नमहोज्ज्वलः४ ॥६॥
प्रेक्ष्य शैलस्य सौन्दर्यमादिशक्तिर्हि सुन्दरी। स्थानञ्चक्रे मुदा पूर्वं समागत्याऽम्बराच्चिरम् ॥७॥
परिवारैः समं देवी योगिनीभिर्विराजते। देवैः सिद्धैः सगन्धर्वैर्मुनिभिर्नित्यसेविता ॥८॥
देवीपादार्घसम्भूता तस्माच्च सुरसुन्दरी। मोक्षवती नदी श्रेष्ठा सुन्दराद्रिस्रवज्जला ॥९॥
तयोः सुसङ्गमे तीर्थे सुन्दराख्ये पवित्रके। तत्रार्णःसेचनाल्लोकः सौन्दर्यमाप्नुयात्तनोः ॥१०॥
देवो वाऽप्यसुरो वाऽपि मर्त्यः पशुस्तथा मुने। तत्र स्नात्वा गिरिं धीमानारोहति हि सुन्दरम् ॥११॥
सर्वपापैर्विनिर्मुक्तो ब्रह्महत्यादिपातकैः। सर्वसुन्दरयानस्थः स याति परमां गतिम् ॥१२॥

---

## अध्याय- ३२ सुन्दराचलको महिमा

अगस्त्य मुनिले भन्नुभयो – ब्रह्मज्ञानीहरूमा श्रेष्ठ हे भगवान् ! कामरूप, सुन्दरीपर्वत तथा वराहपर्वतको माहात्म्य र कौशिकीको उत्पत्तिका बारेमा म फेरि हजुरबाट सुन्न चाहन्छु। म हजुरको भक्त हुँ। मलाई सबै कुरा बताइदिनुहोस् ॥१–२॥

कार्तिक स्वामीले भन्नुभयो – हे भक्त अगस्त्य मुनि ! पहिले म तिमीलाई सुन्दरीपर्वतको सम्पूर्ण माहात्म्य बताउँछु। यो माहात्म्य सुन्नाले पञ्चतत्त्वहरूले बनेको शरीर पवित्र हुन्छ र पापहरू पनि नष्ट भएर जान्छन्। ब्रह्माजीले सुन्दरीपर्वतलाई राम्रा–राम्रा धातुहरूद्वारा बनाउनुभएको थियो। अनेक रत्नले युक्त भएको यो पर्वत उत्तम तीर्थले सुसज्जित छ र यसको शिखर उच्च छ। सुन्दरीपर्वत सबै किसिमका वृक्ष र लहराले भरिएको छ, अनेक किसिमका फूलहरूले सुशोभित छ र सुवर्णलता र सबै ऋतुमा फल्ने फलहरूले सम्पन्न भएको छ। अनेक रत्नले गर्दा प्रकाशमय देखिने यो पर्वत अनेक सौन्दर्यले सुशोभित हुनुका साथै पर्वत सबैको मन हरण गर्न समर्थ छ ॥३–६॥

पहिले कुनै समयमा यस पर्वतको सौन्दर्यलाई देखेर आदिशक्ति सुन्दरी भवानी यसै ठाउँमा आएर धेरै समयसम्म आनन्दपूर्वक बस्नुभएको थियो। देवता, सिद्ध, गन्धर्व र ऋषिहरूले नित्य सुसेवित सुन्दरी भगवती आफ्ना योगिनी तथा परिवारहरूका साथ यस पर्वतमा विराजमान हुनुभएको छ। देवीको पाउमा चढाइएको अर्घबाट उत्पन्न भएको हुँदा सुन्दरपर्वतबाट निस्किएकी देवीको नाम सुरसुन्दरी रहेको छ। सुन्दरपर्वतमा रहेको तलाउबाट झरेकी अर्की उत्तम नदी मोक्षवती छन् ॥७–९॥

ती दुई नदीको मनोहर सङ्गममा पवित्र सुन्दरतीर्थ छ। त्यहाँको जलमा स्नान गर्दा मानिसले शरीरलाई सौन्दर्ययुक्त बनाउन सक्छ। हे अगस्त्य मुनि ! देवता, राक्षस, मानिस वा पशु जोसुकै होस्, त्यस तीर्थमा स्नान गरेपछि बुद्धिमान्ले सुन्दरपर्वतमा चढ्नुपर्छ। त्यसरी आरोहण गर्ने सामर्थ्य राख्ने व्यक्ति ब्रह्महत्या आदि गरिएका सम्पूर्ण पापहरूबाट मुक्त भई सबैभन्दा सुन्दर विमानमा चढेर परमगतिमा प्राप्त हुन्छ ॥१०–१२॥

---

१. कृतं शैलम्, इति न.सं.पु.पाठः।
२. समाकीर्णं श्रवस्तीर्थं सशेखरम्, इति न.सं.पु.पाठः।
३. कीर्णं नानापुष्पोपशोभितम्, इति न.सं.पु.पाठः।
४. राजमानं महाशैलं सर्वसौन्दर्यशोभितम्। सर्वलोकमनोहार्यं नानारत्नमहोज्ज्वलम्। इति न.सं.पु.पाठः।

स्नातकस्तत्र शैलेन्द्रं समारुह्य प्रदर्शनम्। भक्त्या करोति यो देव्यास्तस्य पुण्यफलं शृणु ॥१३॥
अश्वमेधसहस्रस्य वाजपेयशतस्य[५] च। शतस्वर्णतुलादानादीनाञ्च प्राप्नुयात् फलम्[६] ॥१४॥
सकृद्दर्शनमात्रेण स्नात्वा तीर्थे च यत् फलम्[७]। तत्फलं प्राप्य देहान्ते मोक्षं संलभते हि सः ॥१५॥
कश्चिन्म्लेच्छः पुरा मुक्तः कण्डुर्नाम धनुर्धरः। मृगयां गतवाँस्तत्र मृगान् नाऽऽप्य स कोपकृत् ॥१६॥
महाष्टम्यां स तत्तीर्थे जलं प्राश्य गिरिं गतः। देवर्षिसेवितां देवीं ददर्शाद्रौ हि सुन्दरीम् ॥१७॥
ज्ञानयुग्दर्शनाद्देव्या निष्पापस्तां ननाम वै। धनुस्त्यक्त्वा विरक्तोऽसौ वव्रे वरं हृदीप्सितम् ॥१८॥

कण्डुरुवाच

देवि मां कुरु भूपेशं भोक्ष्ये येन सुखानि तत्। ततस्त्वत्सेवको भूत्वा विचरामि यथासुखम् ॥१९॥

स्कन्द उवाच

एवं प्रार्थ्य[८] वरं म्लेच्छो भक्त्या देवीं ननाम हि। उवाच योगिनी[९] देवी वरदानाय मङ्गलाम् ॥२०॥

योगिन्युवाच

स्वर्गं वा काङ्क्षसे पुत्र भूतिं वा भुवि दुर्लभाम्। अवश्यं प्राप्यते तद्धि देवीप्रदर्शनाद्वरम् ॥२१॥

कण्डुरुवाच

नाऽहं यास्याम्यहं स्वर्गं भुक्त्वा भोग्यरसं विना। ततो यास्यामहं देव्याः सेवितुं पादपङ्कजम्[१०] ॥२२॥

---

सुन्दरतीर्थमा स्नान गरेर सुन्दरपर्वतमा चढी भक्तिपूर्वक देवीको दर्शन गर्ने व्यक्तिले कस्तो पुण्यफल प्राप्त गर्दछ, त्यो सुन्नुहोस्। हजार अश्वमेध यज्ञ, सय वाजपेय यज्ञ र सयवटा सुवर्णमय तुलादान गर्दा जुन फल प्राप्त हुन्छ, त्यस पर्वतमा चढेर देवीको दर्शन गर्दा पनि सोही फल प्राप्त हुन्छ। एक पटक मात्रै तीर्थमा स्नान गरेर सुन्दरीदेवीको दर्शन गर्ने व्यक्तिलाई उत्तम फल प्राप्त हुन्छ र मरेपछि उसले मुक्ति प्राप्त गर्दछ ॥१३-१५॥

कण्डुनाम गरेको धनुर्धारी कुनै म्लेच्छ अघि यसै पर्वतमा पुगेर मुक्त भएको थियो। त्यो म्लेच्छ कुनै दिन मृगको सिकार गर्न वनमा गयो र त्यस वनमा मृग नपाएपछि अत्यन्त रिसायो। महाष्टमीका दिन त्यो म्लेच्छ सुन्दरतीर्थको जल पिएर पहाडमा उक्लियो। त्यस पर्वतमा उसले देवता र ऋषिद्वारा पूजित सुन्दरीदेवीलाई देख्यो। देवीको दर्शन गर्नाले त्यो ज्ञानी भयो र पापबाट मुक्त भएको त्यसले देवीलाई प्रणाम गर्‍यो। त्यसपछि धनुष फालेर विरक्त भएको त्यस म्लेच्छले देवीसित मनले चिताएको वर माग्यो ॥१६-१८॥

कण्डुले भन्यो – हे देवी ! मलाई राजा बनाइदिनुहोस्। म आनन्दसित सुखभोग गर्न पाऊँ। त्यसपछि म हजुरको सेवक भएर आनन्दपूर्वक विचरण गर्नेछु ॥१९॥

कार्तिक स्वामीले भन्नुभयो – त्यस म्लेच्छले यस्तो किसिमको वर मागेर देवीलाई भक्तिपूर्वक नमस्कार गर्‍यो। त्यसपछि परोपकार गर्न इच्छुक भगवतीकी गणयोगिनीले उसलाई भन्न लागिन् ॥२०॥

योगिनीले भनिन्– हे पुत्र ! तिमी स्वर्ग चाहन्छौ या पृथ्वीको ऐश्वर्य चाहन्छौ ? देवीको दर्शन गर्नाले त्यो वर अवश्य प्राप्त हुन्छ ॥२१॥

कण्डुले भन्यो – हे माता ! म पृथ्वीका भोग्यवस्तुको उपभोग नगरी स्वर्ग जान चाहन्न। देवीको कमलरूपी पाउको सेवा गरेपछि मात्रै म स्वर्ग जानेछु ॥२२॥

---

५. सहस्राणि वाजपेयशतानि, इति न.सं.पु.पाठः।
६. हिरण्यशतं तुलानामेतेषां यत्फलं लभेत्, इति न.सं.पु.पाठः।
७. महाफलम्, इति न.सं.पु.पाठः।
८. याच्य, इति न.सं.पु.पाठः।
९. च गणो, इति न.सं.पु.पाठः।
१०. यास्याम्यहं मातर्देव्याः पादाब्जसेवनम्, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

इति श्रुत्वा वचस्तस्य मङ्गला सा सुमायया। विमुह्य तं धरां प्राधस्तिरश्चक्रे हि[११] सुन्दरीम् ॥२३॥
विस्मृत्य पूर्ववृत्तान्तं सोऽपि स्थानं निजं गतः[१२]। प्राप्तवान्स सुखं म्लेच्छो भुक्त्वा म्लेच्छाधिपो भुवि[१३] ॥२४॥
सहस्रवत्सरान्ते स ज्ञानयुक्तो नृपोत्तमः। सस्मार सुन्दरीं भक्त्या मनसेच्छन् हि तत्पदम् ॥२५॥
आरुहन्तं गिरिं तन्ते[१४] समास्थाय विमानके। निन्युः शिवपुरं शैवाः सदेहं पुष्पवृष्टिभिः[१५] ॥२६॥
तस्य पूर्वोत्तरे भागे हयग्रीवो जनार्दनः। वर्तते शैलराजे च कल्किरूपो घटोद्भव ॥२७॥
अन्ते कलियुगस्याऽऽर्य तद्रूपं धृतवान्हरिः। संहर्तुं प्राणिनः सर्वान् भूय एकार्णवाय च ॥२८॥
विष्णुधारा नदी श्रेष्ठा विष्णुस्नानेन सम्भवा। पुण्या नदी तयोर्योगे विष्णुतीर्थमुदाहृतम् ॥२९॥
तत्र स्नात्वा हयग्रीवं प्रेक्षते श्रद्धया[१६] नरः। सर्वपापैर्विनिर्मुक्तः स याति परमां गतिम् ॥३०॥
तत्रैव च महालिङ्गं यः पश्यति नरोत्तमः। विधूय सर्वपापानि रुद्रलोकं स गच्छति ॥३१॥

यश्चैनमध्यायमृषे शृणोति प्राधाय चित्तं लभते ह्यजस्रम्।
रूपञ्च लक्ष्मीं तनयं प्रभुत्वं जयं तथायुः परमं हि चाऽन्ते ॥३२॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे सुन्दरशैलमाहात्म्यं नाम द्वात्रिंशोऽध्यायः ॥३२॥

---

कार्तिक स्वामीले भन्नुभयो – म्लेच्छको त्यस्तो कुरा सुनेर मङ्गला नामकी योगिनीले आकाशबाट पृथ्वीमा ओर्लिई त्यसलाई मायाले मोहित तुल्याएर सुन्दरीदेवीलाई लुकाइदिइन्। हे मुनि ! त्यस म्लेच्छले पनि त्यो सबै वृत्तान्त बिर्सियो र आफ्नो स्थानमा फर्कियो। सुन्दरीदेवीको दर्शनको प्रभावले त्यो म्लेच्छको राजा भएर धेरै समयसम्म राज्यको सुखभोग गर्‍यो। हजार वर्षपछि त्यो म्लेच्छराजा ज्ञानी भयो र उसले सुन्दरीको लोकको इच्छा गर्दै भक्तिपूर्वक सुन्दरीदेवीको स्मरण गर्‍यो। सुन्दरी पहाड चढ्न लागेको त्यस म्लेच्छलाई शिवका गणहरूले फूलको वर्षा गर्दै सशरीर विमानमा राखेर शिवलोक लिएर गए। हे अगस्त्य मुनि ! त्यस क्षेत्रको पूर्व र उत्तरको मध्यभाग अर्थात् ईशानकोणमा रहेको पर्वतमा कल्किको रूप लिएर हयग्रीव नाम गरेका जनार्दन भगवान् रहनुभएको छ ॥२३-२७॥

हे आर्य ! सम्पूर्ण पृथ्वीलाई जलमय बनाएर कलियुगको अन्त्यमा भगवान् विष्णुले सारा प्राणीहरूको हरण गर्नका लागि त्यो रूप धारण गर्नुभएको हो। विष्णुले स्नान गरेको हुँदा त्यस स्थानमा विष्णुधारा नाम गरेकी नदी उत्पन्न भएकी छिन्। त्यस्तैत्यहाँ अर्की पुण्या नाम गरेकी नदी छिन्। ती दुईको सङ्गमलाई विष्णुतीर्थ भनिन्छ। विष्णुतीर्थमा स्नान गरेर जसले हयग्रीव भगवान्को दर्शन गर्छ, त्यो व्यक्ति सम्पूर्ण पापबाट मुक्त भई परमगतिमा पुग्छ। जो मानिसले त्यस स्थानमा अवस्थित महालिङ्गको दर्शन गर्छ त्यो मानिस सम्पूर्ण पापबाट मुक्त भएर रुद्रलोक जान्छ। जसले ध्यान दिएर निरन्तर यो अध्याय सुन्छ त्यसले रूप, सम्पत्ति, सन्तान, स्वामित्व, विजय एवं आयु पाउँछ र अन्त्यमा परमगति प्राप्त गर्दछ ॥२८-३२॥

पराम्बा वाग्वादिनी भगवतीको असीम अनुकम्पाबाट पोरकनी पाल्पा निवासी पतिव्रताशिरोमणि स्वर्गीय माताश्री दिव्यलक्ष्मी ढकाल र सज्जनमुकुटमणि स्वर्गीय पिताश्री चूडामणि ढकालका कनिष्ठ पुत्र नेपाल संस्कृत विश्वविद्यालय सेवा आयोगका अध्यक्ष प्रा. डा. वेणीमाधव ढकालद्वारा नरहरिनामक भाषानुवादसहित सम्पादित हिमवत्खण्डको कामाख्या-कौशिकी-गण्डकी प्रकरणमा सुन्दराचलमहिमा शीर्षकान्वित बत्तीसौं अध्याय पूरा भयो ॥

---

११. तदागत्य तिरश्चकार, इति न.सं.पु.पाठः।
१२. सोऽपि गतः स्वकं स्थानं तद्वृत्तान्तञ्च विस्मृतः, इति न.सं.पु.पाठः।
१३. तत्प्रभावान्मुने म्लेच्छो भुक्त्वा म्लेच्छाधिपः सुखं, इति न.सं.पु.पाठः।
१४. गिरिमारोहमाणं तम्, इति न.सं.पु.पाठः।
१५. पुष्पवर्षयन्, इति न.सं.पु.पाठः।
१६. भक्त्या प्रेक्षति यो, इति न.सं.पु.पाठः।

# त्रयस्त्रिंशोऽध्यायः

भगवतीकामाख्यामाहात्म्यम्

स्कन्द उवाच

कामाचलस्य माहात्म्यं प्रवक्ष्याम्यधुना मुने। तस्य श्रवणमात्रेण कोटितीर्थफलं लभेत् ॥१॥
ब्रह्मणा च कृतः शैलः कामेनोत्तममञ्चितः[१]। देवो मनोहरो दिव्यो सर्वभूतसुखावहः[२] ॥२॥
नानाधातुसमाकीर्णो नानारत्नाकरोज्ज्वलः[३]। हिमवच्छृङ्गरूपोऽयं धातुतेजोमयो गिरिः[४] ॥३॥
वृक्षैर्हिरण्मयैर्युक्तो[५] लताभिश्च तथाविधः। निकुञ्जै राजितो दिव्यो परमो मेरुसंज्ञितः[६] ॥४॥
नानापुष्पैः प्रफुल्लैश्च स्थलपद्मैः प्रशोभितः[७]। मयूरैः कोकिलैर्भृङ्गैर्जीवञ्जीवैश्च सारसैः ॥५॥
आलोक्य योगमाया सा शैलराजं मनोहरम्। अवतीर्य मुदा व्योम्नस्तत्कूटे ह्यवसत्सुखम् ॥६॥
मुमोद च महादेवी तच्छेखरे रहः सदा। ब्रह्मपुत्रस्तदाऽगस्त्य तत्प्रान्तरे उवाह वै ॥७॥
देव्यास्तत्र रहः सानु त्वं जानीहि घटोद्भव। सा कामरूपिणी देवी प्रत्यक्षा तत्र तिष्ठति ॥८॥
गत्वार्च्चीति मुने धीमान् भक्त्या नानोपहारकैः। सकृदपि च कामाख्यां तस्य पुण्यफलं शृणु ॥९॥
कोटिजन्मार्ज्जितैः पापैर्मुञ्चत्येकक्षणान्नरः। तस्य नेत्रार्जितैर्भूयो वाक्कायमानसार्ज्जितैः ॥१०॥
धनधान्यैः समायुक्तो दारापुत्रैश्च किङ्करैः। नरेन्द्राणां सुखं लब्ध्वा भुनक्तीह सुखं बहु ॥११॥

---

## अध्याय- ३३

### भगवती कामाख्याको महिमा

कार्तिक स्वामीले भन्नुभयो – हे मुनि ! अब म कामाचलको माहात्म्य बताउँछु। त्यसको माहात्म्य सुन्यो भने पनि करोडौं तीर्थ गरेको फल प्राप्त हुन्छ। ब्रह्माजीले रचना गर्नुभएको कामाचल नामक पर्वत कामदेवद्वारा समलङ्कृत छ। यो पर्व देवताहरूका निमित्त अति सुमनोहर छ, दिव्य छ र सम्पूर्ण प्राणीहरूलाई दिव्य सुख प्रदान गर्न समर्थ छ।। विभिन्न किसिमका धातुले भरिपूर्ण यो पर्वत अनेक रत्नका खानीहरूले उज्वल देखिन्छ। धातु र तेजले युक्त भएको यो पर्वत हिमालयको उच्च शिखर पनि हो ॥१-३॥

कामाचलनामक यो पर्वत सुनौला रुख तथा लहराहरूले युक्त भएको छ। झाडीहरूले गर्दा अत्यन्त सुशोभित यसलाई मेरुपर्वत भन्दछन्। फुलेका विभिन्न किसिमका फूलहरू र स्थलकमलले सुशोभित यस पर्वतलाई मयूर, कोइली, भ्रमरा, चखेवा र सारौंले अझ शोभायमान बनाएका छन्। यस्तो प्रकारको सुन्दर पर्वतराजलाई देखेर योगमाया त्यस स्थानमा ओर्लनुभयो र आनन्दपूर्वक पर्वतको शिखरमा बस्नुभयो। भगवती महादेवी त्यस पर्वतको शिखरमा रहेको एकान्तस्थलमा नित्य हर्षोल्लासका बस्न थाल्नुभयो। यसको फेदीमा ब्रह्मपुत्र नद नजिकैबाट बगिरहन्छ ॥४-७॥

हे अगस्त्य मुनि ! त्यसलाई तपाईं देवीको शिखर हो भनेर बुझ्नुहोस्। इच्छाअनुसार रूप लिन सक्ने ती देवी त्यस पर्वतमा प्रत्यक्ष भएर रहनुभएको छ। हे अगस्त्य मुनि ! बुद्धिमान् मान्छेले एक पटक मात्र भए पनि त्यहाँ गएर पूजासामग्रीले भक्तिपूर्वक कामाख्यादेवीको पूजा गर्छ भने त्यसको कस्तो पुण्य हुन्छ, त्यो सुन्नुहोस्। भगवती कामाख्याको अर्चना गर्ने मानिसले करोडौं जन्ममा गरेको पापबाट तत्काल मुक्ति प्राप्त गर्दछ। ऊ नयन, वचन, तन र मनले गरेका पापबाट पनि मुक्त हुन्छ। त्यस व्यक्तिले धन, धान्य, पत्नी, पुत्र र सेवकहरूले युक्त भई राजाहरूले जस्तै गरी यस संसारमा धेरै सुखभोग गर्न पाउँछ ॥८-११॥

---

१. कृतं शैलं कामेनोत्तममञ्चितम्, इति न.सं.पु.पाठः।
२. देवं मनोहरं दिव्यं सर्वभूतसुखावहम्, इति न.सं.पु.पाठः।
३. नानाधातुसमाकीर्णां नानारत्नाकरोज्ज्वलम्, इति न.सं.पु.पाठः।
४. हिमवतो वरं शृङ्गं धातुतेजोमयं गिरिम्, इति न.सं.पु.पाठः।
५. युक्तम्, इति न.सं.पु.पाठः।
६. राजितं दिव्यं परमं मेरुसंज्ञितम्, इति न.सं.पु.पाठः।
७. प्रशोभितम्, इति न.सं.पु.पाठः।

देहान्ते च पुरे शैवे परात्परं सुखात्सुखम्। पितॄन् कुलानि चोद्धृत्य दिव्ययानेन गच्छति ॥१२॥
योगधारा नदी श्रेष्ठा ब्रह्मपुत्रनदस्तथा। तयोः सुसङ्गमेऽगस्त्य योगतीर्थमुदाहृतम् ॥१३॥
रुद्रेणैव कृतो योगस्तत्राप्लुत्य च भस्मना। तत्रैव स्थापितं लिङ्गं स्वहस्तेन सुखं परम् ॥१४॥
तत्र स्नात्वा दिवं यान्ति योगं प्राप्य सुदुश्चरम्। देवगन्धर्वदैत्याश्च यो वा को वा नरोऽपि वा ॥१५॥
ब्रह्मपुत्रनदस्नातो वाजि[८]मेधफलं लभेत्। स्नात्वाच्चर्येति शिवां तत्र न लभेत् स पुनर्जनिम्[९] ॥१६॥
योगकुण्डे नरो धीमान्स्नात्वा योगीश्वरो भवेत्। ब्रह्मणा च कृतो योगः कुण्डं निर्माय वै पुरा ॥१७॥
तत्र जप्तं हुतं दत्तं तत्सर्वमक्षयं भवेत्। स्नात्वार्च्चेति शिवां यो वै स एव मुक्तिभाजनम् ॥१८॥
मोहनाकर्षणस्तम्भवश्योच्चाटनमारणम्। तत्र स्नायी जपाद्देव्यां तेषां[१०] सिद्धिमवाप्नुयात् ॥१९॥
मयेनैव पुरा लब्धा तत्र माया महासुरी। देव्याः प्रसादतः सा वै तया[११] सम्मोहितं जगत् ॥२०॥
संवरेण तथा धीमान् लब्धा माया पुरा च सा। भक्त्याऽऽराध्य च कामाख्यां यया सम्मोहितो हरिः ॥२१॥
ब्रह्मा विष्णुश्च रुद्रश्च लब्धवन्तो वरोत्तमान्। जगतां मोहिनीं मायां तामाराध्य सुभक्तितः ॥२२॥
योगकुण्डे मुदा स्नात्वा यस्तन्मन्त्रं जपेत्सुधीः। प्राप्नोति सोऽपि तां सिद्धिं देव्याः प्रसादतः खलु ॥२३॥
ब्रह्मा देव्याः सुभक्त्यैव तपश्चकार तत्र च। कुण्डं विधाय योगेन योगकुण्डं ततः स्मृतम् ॥२४॥
योगेश्वरं महालिङ्गं भक्त्या पूजति तत्र च। मूर्खो ज्ञानविहीनो वा सोऽपि योगीश्वरो भवेत् ॥२५॥

---

कामाख्यादेवीको पूजा गर्ने मानिस मरेपछि सम्पूर्ण पितृ र कुलको उद्धार गरेर दिव्य यानमा चढी अत्यन्त सुखमय शिवको परमलोकमा जान्छ। हे अगस्त्य मुनि ! त्यहाँ ब्रह्मपुत्रनामको श्रेष्ठ नद छ। त्यहीँ नै योगधारा नाम गरेकी श्रेष्ठ नदी मिल्दछिन्। ती दुईको सङ्गमस्थललाई योगतीर्थ भनिएको छ। त्यस योगतीर्थमा भगवान् रुद्रले विभूतिले स्नान गरेर योगसाधना गर्नुभएको थियो। उहाँले त्यस स्थानमा आफ्नै हातले अत्यन्त सुखप्रद लिङ्गको स्थापना गर्नुभएको थियो। देवता, गन्धर्व, दैत्य, मानिस अथवा जो कोही होस्, जसले त्यस तीर्थमा गएर स्नान गर्दछ त्यसले कसैले पाउन नसक्ने योग प्राप्त गरेर स्वर्ग जान पाउँछ ॥१२-१५॥

हे अगस्त्य मुनि ! ब्रह्मपुत्र नदमा स्नान गर्नाले अश्वमेध यज्ञ गरेको फल प्राप्त हुन्छ। त्यहाँकी भगवतीलाई स्नान गरेर पूजा गरेमा यो संसारमा पुनर्जन्म लिएर आउनुपर्दैन। बुद्धिमान् मान्छेले योगकुण्डमा स्नान गर्‍यो भने त्यो योगीश्वर बन्छ। पहिले कुनै समयमा ब्रह्माजीले यस कुण्डको निर्माण गरेर योगसाधना गर्नुभएको थियो। त्यहाँ जप, होम अथवा दान गर्‍यो भने त्यो सबै अक्षय भएर रहन्छ। स्नान गरेर जसले भगवतीको पूजा गर्छ, त्यो मुक्त हुन्छ। त्यस तीर्थमा स्नान गरेर देवीका मन्त्रहरूको जप गर्नाले मारण, मोहन, वशीकरण, उच्चाटन, स्तम्भन र आकर्षणसमेतका सबै काम गर्ने सिद्धि प्राप्त हुन्छ ॥१६-१९॥

पहिले मय दानवले देवीको अनुकम्पाबाट आसुरी माया प्राप्त गरेको थियो र तिनै मायाबाट नै संसारलाई मोहित बनाएको थियो। हे बुद्धिमान् अगस्त्य ! अघि कामाख्यादेवीको भक्ति गरेर प्राप्त गरेको मायाद्वारा शम्बरासुरले भगवान् हरिलाई समेत मोहित तुल्याएको थियो। ब्रह्मा, विष्णु र रुद्रले पनि ठूलो भक्तिका साथ ती जगत्मोहिनी मायाको आराधना गरी उत्तम वर प्राप्त गरेका थिए ॥२०-२२॥

योगकुण्डमा स्नान गरेर जसले देवीका मन्त्रहरू जप्दछन्, ती सबैले योगमायाको अनुकम्पाद्वारा योगसिद्धि प्राप्त गर्दछन्। ब्रह्माजीले भक्तिपूर्वक योगमायाको तपस्या गर्नुभयो र योगद्वारा त्यस कुण्डको निर्माण पनि गर्नुभयो। जसले गर्दा त्यस कुण्डको नाम योगकुण्ड रहेका थियो। त्यस स्थानमा गएर भक्तिपूर्वक योगेश्वरको पूजा गर्नाले अज्ञानी मूर्ख पनि योगीश्वर हुन्छ ॥२३-२५॥

---

८. अश्व, इति न.सं.पु.पाठः।
९. संसृतिं न लभेन्मुने, इति न.सं.पु.पाठः।
१०. तत्सर्वम्, इति न.सं.पु.पाठः।
११. यया, इति न.सं.पु.पाठः।

यावत्यो योषितः सर्वास्तत्र तिष्ठन्ति सर्वदा। ताः सर्वाः कामरूपिण्यो योगिन्यश्च न संशयः ॥२६॥
स्नात्वा तत्र महामायां योऽर्च्चति भक्तिपूर्वकम्। न पुनर्जायते योनौ योगी मोक्षमवाप्नुयात् ॥२७॥
भस्माद्रिशेखरे लिङ्गं भस्मेश्वरं हि योऽर्च्चति। पुनर्जन्म परित्यज्य गच्छति परमं शिवम् ॥२८॥
आसीद्वेश्या पुरागस्त्य सुकेशी नाम विश्रुता। वैश्यपुत्री च धर्मिष्ठा सुस्वरा गीततत्परा ॥२९॥
माहात्म्यं मीनराजस्य श्रुत्वा काश्यां यथोदितम्। उज्जयिनीं घटोद्भूत परित्यज्य पतिं गृहम् ॥३०॥
तीर्थराजे हि सा स्नात्वा सोमेश्वरमपूपुजत्। भक्त्या च माघशुक्लायां नवम्यां सुष्ठु जागृता ॥३१॥
ययाचे मनसा देवीं सम्पूज्य विधिवन्मुहुः। त्यक्तनिद्रा निशायां सा वेश्या सर्वाङ्गसुन्दरीम् ॥३२॥
देवि सुसुन्दरीं मां त्वं कुरु लोकविमोहिनीम्। विमुह्यन्तां नरा देवा मां प्रेक्ष्यार्ये परेः पुनः ॥३३॥
यावज्जीवं सुखं भुक्त्वा युवभिः सुन्दरैः सह। ततोऽमरावतीं गत्वा तत्र भोक्ष्येऽमरैः समम् ॥३४॥
वरमेनञ्च[१२] मे देहि देवेशि भक्तवत्सले। सर्वपापानि मे मातः संहराघविनाशिनि ॥३५॥

स्कन्द उवाच

एवं प्रार्थ्य वरं देव्याः स्नात्वा तत्र प्रहर्षिता। देव्याः प्रभावात्तीर्थानि[१३] प्रेक्ष्य सर्वाङ्गसुन्दरी ॥३६॥
काश्यां सा प्रययौ सार्द्धं क्रीडन्ती तरुणैरपि[१४]। मुहुर्मुहुः प्रेक्षकास्ते बालवृद्धाश्च मध्यमाः ॥३७॥
प्रलोभयन्तो रत्नानि मण्डनानि च ते ददुः[१५]। तदैतया समं क्रीडां चिक्रीडू रसिका मुहुः ॥३८॥
सङ्गीतै रूपसौन्दर्यैर्युवानो दासवत्सदा। देहान्ते चानयन् दूता देव्या इन्द्रपुरीं मुने ॥३९॥
तत्र रेमे सुखं शश्वद्देवगणैः समं हि सा। सहस्राब्दं सुखं व्याप्य कौतूहलैर्घटोद्भव ॥४०॥
सुधर्मायां स्थितं शक्रं सा प्रेक्ष्य मोहसंयुता। तया तदन्तिकं गत्वा गीतैरिन्द्रः प्रसेवितः[१६] ॥४१॥

---

त्यस ठाउँमा निरन्तर बस्ने जति पनि स्त्रीहरू छन् ती सबै कामरूपा योगिनी हुन्। यसमा कुनै सन्देह छैन। भक्तिपूर्वक यस तीर्थमा स्नान गरेर जसले महामाया भगवतीको दर्शन गर्दछ, त्यसले यस संसारमा फेरि जन्म लिनुपर्दैन। योगी छ भने त्यो मुक्त हुन्छ। जसले कामाचलका समीपमा रहेको भस्माद्रि नाम गरेको पर्वतशिखरमा गएर जसले भस्मेश्वरको पूजा गर्दछ त्यो पुनर्जन्मको परित्याग गरी परम शिवपदमा पुग्दछ ॥२६-२८॥

हे अगस्त्य मुनि ! पहिले कुनै वैश्यकी सुकेशी नाम गरेकी छोरी वेश्या थिई। त्यो धर्मात्मा,मधुर स्वर भएकी तथा गीत गाउन सिपालु थिई। गायनमै अतिशय रमाउने उसले काशीमा मीनराजको माहात्म्य सुनेर आफ्नो घर तथा पति भएको उज्जयिनीलाई समेत छोडी माघशुक्ल नवमीका दिन भक्तिपूर्वक तीर्थराजमा स्नान गरेर उमेश्वरको पूजा गरी र रातमा जाग्राम बसी। उसले त्यहाँ मनद्वारा सर्वाङ्गसुन्दरी देवीको भक्तिपूर्वक बारम्बार पूजा गरेर जाग्रामसमेत बसेर वर मागी- हे देवी ! मलाई सम्पूर्ण संसार मुग्ध गराउन सक्ने सौन्दर्यरूपी वर दिनुहोस्। मलाई देखेर देवता, मानिस तथा अरू पनि सबै मोहित बनून्। जीवनभर सुखपूर्वक सुन्दर युवकहरूका साथ भोग गरेर मरेपछि स्वर्ग जान पाऊँ र स्वर्गमा पनि देवताहरूका साथ भोग गर्न पाऊँ। हे देवी ! हे भक्तवत्सल ! मलाई यो वर दिनुहोस्। हे माता ! मेरा सम्पूर्ण पापहरू आजै नाश गरिदिनुहोस् ॥२९-३५॥

कार्तिक स्वामीले भन्नुभयो - यसरी प्रार्थना गरेपछि त्यस तीर्थमा स्नान गरेर त्यो वेश्या अत्यन्त प्रसन्न भई। ती तीर्थहरूको दर्शन गरेको हुँदा देवीको प्रभावले उसका सबै अङ्गहरू सुन्दर भए। काशीमा गएर बालक, वृद्ध र युवकहरूको बीचमा बसेर उसले सौन्दर्यरसिक युवकहरूका साथ अनेक क्रीडा गरी ॥३६½॥

रसिकहरूले उसलाई रत्न, लुगा र गहना दिएर लुब्ध तुल्याएर बारम्बार क्रीडा गरे। सङ्गीत, रूप र सौन्दर्यले गर्दा युवकहरू उसका दासजस्तै भए। मरेपछि उसलाई देवीका दूतहरूले इन्द्रपुरीमा लगे। हे अगस्त्य मुनि ! त्यहाँ त्यो वेश्या देवताका गणहरूका साथ हजार वर्षसम्म आनन्दपूर्वक विभिन्न किसिमका भोग गरेर बसी। त्यो वेश्या सुधर्मा नामको देवसभामा विराजमान इन्द्रलाई देखेर मोहित भई। त्यसपछि नजिकै गएर उसले मधुर गीत गाई र इन्द्रको सेवा गरी ॥३७-४१॥

---

१२. हि विनिद्रका, इति न.सं.पु.पाठः।
१२क. एतद्वरञ्च, इति न.सं.पु.पाठः।
१३. प्रभावतो तीर्थान्, इति न.सं.पु.पाठः।
१४. क्रिडयन्पथि, इति न.सं.पु.पाठः।
१५. ददू रत्नानि वासांसि मण्डलानि प्रलोभयन्, इति न.सं.पु.पाठः।

कामातुरां तदा शक्रः तां प्रेक्ष्याशु रुषान्वितः । शक्रं विव्वोकयुक्ता सा समालिङ्गनतत्परा[१७] ॥४२॥
किङ्करान् सत्त्वरं[१८] शक्रो व्याचष्ट वचनं तदा । एनां निस्सार्य स्वर्गाद्धि[१९] पृथ्व्यां पातयत ध्रुवम् ॥४३॥
प्रगृह्य त्वरितं दूताः सुकेशीं शक्रदेशिकाः । आनीय पृथिवीं ते तां चिक्षिपुः कुतृणं यथा ॥४४॥
सा च दुःखातुरागस्त्य क्रन्दमाना रसान्तरे । किं करोमि क्व गच्छामि चेति चिन्ताकुला मुहुः ॥४५॥
दशाब्दान्ते हि काश्यां सा शुश्राव[२०] विप्रवक्त्रतः । कामरूपस्य माहात्म्यं मनःकामफलप्रदम् ॥४६॥
साऽपि त्यक्त्वा पुनः काशीमगमन्नीलपर्वतम् । संस्मृत्य पादुकां देव्या कामयन्ती हि मानसे ॥४७॥
ब्रह्मपुत्रे हि सा स्नात्वा योगकुण्डे तत पुनः । देव्यालयं मुदा भक्त्या द्वारं नत्वा न्यवीविशत् ॥४८॥
आदाय मनसीन्द्रं सा दासत्वेन पतिं मुने । तमेव चिन्तयन्ती सा देवीमपूपुजत् मुदा[२१] ॥४९॥
महाष्टमीं समारभ्य दशम्यां तामपूपुजत् । जपार्च्चनैर्हि सा देव्या त्रिविधैर्निशि जाग्रती ॥५०॥
देवि मे देहि शक्रं तं दासत्वेन पतिं सति । यो विनिन्द्या[२२] क्षिपन्मातः स्वर्गात्त्वच्छरणं गता ॥५१॥
सम्प्रार्थ्य वन्दमानायां तस्यां देवीं[२३] शिवां निशि । आययुः कामरूपिण्यो विमानपाणयो मुने ॥५२॥
आस्थाय तां विमाने ताः साङ्गा निन्युर्वियत्पथम् । ईषे शुक्लदशम्यां वै देव्याः प्रसादतः सुखम् ॥५३॥
शक्रोऽपि तन्निशायाञ्च कामातुरो हि तां स्मरन्[२४] । अवोचद्वचनं कष्टी चामन्त्र्य बृहतां पतिम् ॥५४॥

---

इन्द्र कामुक त्यस वेश्यालाई देखेर रिसाए । विभिन्न कामचेष्टाका हावभाव देखाउने त्यस वेश्याले इन्द्रलाई आलिङ्गन गर्न खोजी । इन्द्रले तत्काल उसलाई तुरुन्त निकालेर पृथ्वीमा खसाइदेओ भनी आफ्ना अनुचर हरूलाई आदेश दिए । अमरावतीमा बस्ने दूतहरूले राम्रा केश भएकी त्यस वेश्यालाई काम नलाग्ने झारजस्तै गरेर पृथ्वीमा ल्याएर फ्याँकिदिए । दुःखले आत्तिएकी त्यो वेश्या पृथ्वीमा बसेर रुन थाली र कहाँ जाऊँ ? के गरूँ ? भन्ने चिन्ताले व्याकुल भई ॥४२-४५॥

त्यसको दश वर्षपछि उसले काशीमा रहेका एक विद्वान्को मुखबाट आफ्नो कामना पूर्ण गरिदिने कामरूप भगवान्को माहात्म्य सुनी । त्यसपछि उसले त्यस ठाउँलाई छोडेर भगवतीको पाउ सम्झँदै आफ्नो इच्छा पूर्ण गराउन कामरूपको नीलपर्वतमा पुगी । उसले ब्रह्मपुत्र र योगकुण्डमा स्नान गरेरभक्तिपूर्वक देवीको मन्दिरको ढोकामा ढोगेर भित्र पसी । उसले इन्द्रलाई पति बनाउने मनमा इच्छा गरी अनेक पूजासामग्रीहरूद्वारा देवीको आराधना गरी । रातमा जाग्राम बसेर महाष्टमीदेखि लिएर दशमीसम्म जप, पूजा तथा तीनै किसिमका भक्तिहरू लगाएर उसले देवीको अर्चना गरी ॥४६-५०॥

मलाई इन्द्रले निन्दा गरेर भूमिमा फ्याँकिदिएको हुनाले दासको रूपमा राख्ने उनलाई म पति बनाउन चाहन्छु । त्यसैले हजुरको शरणमा आएकी छु भनी रातमा प्रणाम गर्दै भगवतीको प्रार्थना गरिरहेकी त्यस वेश्याको नजिकै इच्छानुसार विचरण गर्ने योगिनीहरू विमान लिएर आइपुगे । देवीको अनुकम्पाले गर्दा आश्विन शुक्ल दशमीका दिन त्यसलाई सशरीर विमानमा राखेर योगिनीहरूले आकाशमार्गबाट लिएर गए । इन्द्र पनि त्यसलाई सम्झिएर त्यसै दिनको रातमा कामातुर भए । ज्यादै सङ्कटमा परेका इन्द्रले बृहस्पतिलाई बोलाएर यी वचन उच्चारण गरे ॥५१-५४॥

---

१६. गीतरसैः प्रसेविताः, इति न.सं.पु.पाठः ।
१७. चालिङ्गितुं समुद्यता, इति न.सं.पु.पाठः ।
१८. किङ्करेभ्यस्त्वरा, इति न.सं.पु.पाठः ।
१९. निःसारय ह्यतश्चैनाम्, इति न.सं.पु.पाठः ।
२०. सा शृणोद्विप्रवक्त्रताः, इति न.सं.पु.पाठः ।
२१. इति सञ्चिन्त्य देवेशीमपूपुजत्सम‍र्हणैः, इति न.सं.पु.पाठः ।
२२. येन निन्द्या, इति न.सं.पु.पाठः ।
२३. तदिति प्रार्थ्यमानायां प्रवन्द्यायाम्, इति न.सं.पु.पाठः ।
२४. स्मृतः, इति न.सं.पु.पाठः ।

शक्र उवाच

त्वत्पादाब्जं नमस्येऽहं नमस्ते गुरुदैवत। अद्य मे मथ्यते स्वान्तं मदनेन भृशं शरैः ॥५५॥

निस्सारिता मया[२५] स्वर्गाद् या स्त्री व्याधी शरैश्च सा। निहन्ति मां कुरूपायं न जीवामीह तां विना[२६] ॥५६॥

गुरुरुवाच

गच्छ शक्र ध्रुवं भक्त्या नीलशैलं[२७] शिवाप्रियम्। तत्र गमनमात्रेण मनःकामं प्रलभ्यते ॥५७॥

स्मरन्नर्चय तां वन्द्यां कामाख्यां भक्तितो मुहुः। तस्याः स्मरणमात्रेण लभेत दुर्लभं जनः[२८] ॥५८॥

स्कन्द उवाच

ततः प्रीतो गुरुं नत्वा वज्रायुधो ययौ मुदा। ऐरावतसमारूढः श्रद्धया चिन्तयन्[२९] शिवाम् ॥५९॥

ददर्श व्योम्नि शक्रस्तां सेव्यमानां हि तद्गणैः। सूर्यसन्निभयानस्थां सुकेशीं[३०] भूषितां वराम् ॥६०॥

नृत्यैर्गीतैश्च वाद्यैश्च[३१] सेवितां योगिनीगणैः। चामरैर्धूयमानां तां[३२] पुष्पासारैर्यथेश्वरीम् ॥६१॥

प्रणम्य त्रिविधैः शक्रो योगनिद्रां तदा मुहुः। मेने कृतार्थमात्मानं हृदा देव्याः प्रसादतः ॥६२॥

हर्षगद्गदवागिन्द्रः[३३] परिक्रम्य ह्युवाच ताम् ॥६३॥

शक्र उवाच

स्वागतं भो प्रिये भद्रे प्रियंवदे चिरं दिवि। त्वां विनेमां तनुं शुष्कां सुधादृष्ट्वा[३४] प्रसिञ्चय ॥६४॥

---

इन्द्रले भने – हे गुरुदेव ! म हजुरको पाउमा प्रणाम गर्दछु। कामदेवले बाणद्वारा मेरो हृदयलाई मथन गरिरहेको छ। जुन सुन्दरीलाई मैले स्वर्गबाट बहिष्कार गरेँ, व्याधाको रूप लिएर उसले मलाई बाण हान्न थालेकी छ। त्यसबाट बाँच्ने कुनै उपाय गर्नुहोस्। त्यो विना म बाँच्नै सक्दिन ॥५५-५६॥

बृहस्पतिले भन्नुभयो – हे इन्द्र ! तपाईं मनमा भक्ति राखेर भगवतीको प्यारो नीलाचल पर्वतमा जानुहोस्। त्यहाँ जानाले मात्रै पनि मनको कामना पूर्ण हुन्छ। त्यहाँ गएर भक्तिपूर्वक पूजनीय कामाख्या नामकी देवीको बारम्बार स्मरण गर्दै पूजा गर्नुहोस्। तिनलाई सम्झियो भने मात्रै पनि दुर्लभ वस्तु प्राप्त हुन्छ ॥५७-५८॥

कार्तिक स्वामीले भन्नुभयो – त्यसपछि बृहस्पतिलाई प्रणाम गरी वज्र हातमा लिएर ऐरावतमाथि चढी इन्द्र भक्तिपूर्वक भगवतीको सम्झना गर्दै त्यस स्थानमा गए। सूर्यसमान तेजोमय विमानमा बसेकी, दिव्य आभूषणले भूषित र देवगणद्वारा सुसेवित कुनै सुन्दरीलाई इन्द्रले आकाशमा नै देखे ॥५९-६०॥

ती सुन्दरीलाई योगिनीहरूले नाच, गान तथा बाजा बजाउँदै चमर हल्लाइरहेका थिए। ती सुन्दरीमाथि देवीलाई जस्तै गरी बारम्बार पुष्पवर्षा भएको थियो। इन्द्रले पनि ती योगमायालाई तीनै किसिमका भक्तिद्वारा तन, मन र वचनले प्रणाम गरे। देवीको अनुकम्पाबाट आफूलाई मनमनै कृतार्थ भएको सम्झिए। इन्द्रले ती सुकेशी सुन्दरीलाई आफ्नो दरबारमा पुऱ्याए। त्यसपछि अत्यन्त प्रसन्न भएर मधुर वचन उच्चारण गर्दै दासझैँ भई उनी भन्न लागे ॥५९-६३॥

इन्द्रले भने – हे प्रिया ! हे कल्याणी ! हे प्रियंवदा ! धेरै समयदेखि तिमी नभएको हुँदा मेरो शरीर शुष्क भएको छ। यस्तो ममाथि दृष्टिरूप अमृत सेचन गर ॥६४॥

---

२५. या मया निःसृता ... भूत्वा, इति न.सं.पु.पाठः।
२६. तां विनाहं न जीवये, इति न.सं.पु.पाठः।
२७. निलाचलम्, इति न.सं.पु.पाठः।
२८. दुर्लभं यद् ध्रुवं लभेत्, इति न.सं.पु.पाठः।
२९. भक्त्या विचिन्त्य ताम्, इति न.सं.पु.पाठः।
३०. भूषणैः, इति न.सं.पु.पाठः।
३१. नृत्यगीतैश्च वाद्यैस्ताम्, इति न.सं.पु.पाठः।
३२. चामरैर्धूयते शश्वत्, इति न.सं.पु.पाठः।
३३. वाक्तस्यै, इति न.सं.पु.पाठः।
३४. दृष्ट्वाऽमृतैः, इति न.सं.पु.पाठः।

सुकेश्युवाच

मा स्पृश पुरुहूतार्य निस्सारितां तनुमिमाम्[३५]। या च लब्धा त्वया पूर्वं तामेव व्रज कैतव ॥६५॥

शक्र उवाच

मैवं वद सुकेश्यार्य्ये चाद्यप्रभृति सुन्दरि। शच्या सहार्धशय्यायां शाययिष्यामि निश्चितम्[३६] ॥६६॥

वहेऽहं च तवानुज्ञां सुकेशि सुन्दरि शपे। कामाग्निभस्मदेहं मां रत्यमृतैः प्रसिञ्चय ॥६७॥

स्कन्द उवाच

एवं सम्मानितेन्द्रेण चाप्सरसां गरीयसी। कामाख्याया वरं लब्ध्वा वर्ततेऽद्यापि[३७] कुम्भज ॥६८॥

इत्येतत्कथितं स्वल्पं कामेश्वर्याः प्रसंशनम्। वराहाद्रेश्च माहात्म्यं वक्ष्यामि ते च तच्छृणु ॥६९॥

धनं यशांसि प्रचुरञ्च वित्तं सुतं सुजायां निधिमद्वितीयम्[३८]।
विद्यां तथायुर्लभते स[३९]मर्त्यश्चाध्यायमेनञ्च[४०] शृणोति यस्मात् ॥७०॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे कामाख्यामाहात्म्यं नाम त्रयस्त्रिंशोऽध्यायः ॥३३॥

---

सुकेशीले भनी ! हे इन्द्र ! तिरस्कार गरी स्वर्गबाट निकालिएको यो मेरो शरीरलाई स्पर्श नगर। हे लुब्ध ! तिमीले पहिले जसलाई पाएका थियौ, त्यसैसँग जाऊ ॥६५॥

इन्द्रले भने - हे सुन्दरी ! त्यसो नभन, अबदेखि तिमीलाई र इन्द्राणीलाई आधा शय्यामा आफूँसित शयन गराउँछु। हे सुन्दरी ! हे सुकेशी ! म कसम खाएर भन्छु, तिमी जे भन्छ्यौ म त्यही मान्छु। कामाग्निले भस्म हुन लागेको मेरो शरीरलाई रतिरूपी अमृतले सेचन गर ॥६६-६७॥

कार्तिक स्वामीले भन्नुभयो - हे अगस्त्य मुनि ! कामाख्याबाट वर पाएकी ती सुकेशी अहिलेसम्म पनि अप्सरामा श्रेष्ठ भएर रहेकी छिन्। मैले तपाईंलाई सङ्क्षेपमा कामाख्यादेवीको माहात्म्य बताएँ। अब वराहपर्वतको माहात्म्य बताउँछु, त्यो सुन्नुहोस्। हे मुनीश्वर ! जो मानिसले यो अध्याय सुन्छ, त्यसले धन, कीर्ति, अनुपम सम्पत्ति, पुत्र, असल पत्नी, विद्या एवं आयु प्राप्त गर्दछ ॥६८-७०॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गत हिमवत्खण्डको कामाख्यामाहात्म्य नामक तेत्तिसौं अध्याय पूर्ण भयो।

---

३५. मे निःसृतामिमां तनुम्, इति न.सं.पु.पाठः।
३६. शच्यास्त्वयार्द्धशयायां शयतां वै समं मया, इति न.सं.पु.पाठः।
३७. भवेदद्यापि, इति न.सं.पु.पाठः।
३८. निधिमप्रतीमम्, इति न.सं.पु.पाठः।
३९. प्रलभेद्धि मर्त्य, इति न.सं.पु.पाठः।
४०. अध्यायमेतच्च, इति न.सं.पु.पाठः।

# चतुस्त्रिंशोऽध्यायः

## भगवतो वराहस्य माहात्म्यम्

स्कन्द उवाच

प्रचकार पुरा धाता सर्वधातुमयं गिरिम्। एकयोजनविस्तारं तस्य कूटे ह्रदोत्तमम् ॥१॥
जाम्बूनदमयं कूटं सर्वरत्नोपशोभितम्। सर्वधातुसमायुक्तं गुहाकन्दरशोभितम् ॥२॥
नानाद्रुमलताकीर्णं सर्व्वपुष्पैर्विराजितम्। हिरण्यराजतैः पुष्पैर्भ्रमन्मयूरभृङ्गकैः ॥३॥
दिव्यरम्यं महाकूटं[1] सर्वलोकमनोहरम्। निर्झरैश्च जलोद्भूतैर्द्वितीयो हिमवानिव ॥४॥
तत्रैव भगवान्विष्णुः कोलरूपं दधार सः। धरण्युद्धरणार्थाय तस्माद्वराहपर्वतः ॥५॥
कौशिक्यः[2] सप्त सम्भूय वहन्ति[3] तदधोऽनिशम्। उमायाः स्वेदसम्भूताः प्रणाशिन्योऽखिलैनसाम्[4] ॥६॥
कोको नाम महाशैलस्तत्कन्दरसमुद्भवा। तस्मात्कोकेति विख्याता पुण्यतरा नदी वरा ॥७॥
तयोः सुसङ्गमे तीर्थे वराहतीर्थमुत्तमम्। ईप्सितदञ्च सर्वेषामिति विद्धि घटोद्भव ॥८॥
करोति तत्र यः स्नानं भक्त्या च विधिवद्यथा। विमुक्तः सर्वपापेभ्यो विष्णुलोकं स गच्छति ॥९॥
श्राद्धं करोति तत्तीरे पितृलोकाभिवाञ्छिते। मोदयन्स पितॄन् सर्वान्पितृलोकं प्रगच्छति ॥१०॥
तत्रैव यत्कृतं कर्म्म तत्सर्वमक्षयं भवेत्। शुभाशुभं घटोद्भूत सर्वमेतन्न संशयः ॥११॥
एतन्मध्ये च यावन्त्यो जलधाराः समुद्गताः। ताः सर्वा तीर्थरूपाः[5] स्युस्तासु स्नात्वा दिवं व्रजेत् ॥१३॥
नरः स्नात्वा च कौशिक्यां समारोहति तं गिरिम्। अश्वमेधफलं साग्रं प्रलभेत पदे पदे ॥१४॥

---

## अध्याय - ३४

### भगवान् वराहको महिमा

कार्तिक स्वामीले भन्नुभयो – पहिले कुनै समयमा ब्रह्माजीले सबै धातुले युक्त भएको एउटा पर्वतको निर्माण गरेर त्यसको शिखरमा एक योजन लामो श्रेष्ठ तलाउ पनि बनाउनुभएको थियो। सुवर्णमय शिखरले युक्त त्यो पर्वत सबै किसिमका रत्न, धातु तथा विभिन्न गुफा तथा खोल्सा-खोल्सीले शोभायमान थियो। यस पर्वतमा विभिन्न किसिमका वृक्ष तथा लहराहरू थिए। अनेक प्रकारका पुष्पहरूले शोभायमान यो पर्वत सुन, चाँदीजस्ता फूलहरू तथा त्यहाँ विचरण गर्ने मयूर तथा भ्रमराहरूले सुशोभित थियो ॥१-३॥

संसारमा नै सबैभन्दा सुन्दर र दिव्य यो पर्वत पानी निस्कने झर्नाहरूले गर्दा अर्को हिमालयजस्तो देखिन्थ्यो। त्यसै स्थानमा भगवान् विष्णुले पृथ्वीको उद्धारका लागि वराहको अवतार लिनुभएको थियो। त्यसैले यस पर्वतको नाम वराहपर्वत रह्यो। त्यसको तल्लो भागमा सम्पूर्ण पाप नाश गर्ने, पार्वतीको पसिनाबाट उत्पन्न सातवटा कौशिकी नदी मिलेर बगेका छन्। त्यहाँ कोका नाम गरेको एउटा विशाल पर्वत छ। त्यसैको गुफाबाट निस्किएर बग्ने कोका नाम गरेकी पवित्र नदी पनि छिन् ॥४-७॥

हे अगस्त्य मुनि ! ती दुई नदीको सङ्गममा उत्तम वराहतीर्थ छ। त्यो तीर्थले सबैको इच्छा पूर्ण गरिदिन्छ भन्ने बुझ्नुहोस्। त्यस ठाउँमा जुन मानिसले भक्तिपूर्वक यथाविधि स्नान गर्छ, त्यो व्यक्ति सम्पूर्ण पापबाट मुक्त भई विष्णुलोक जान्छ। जसले पितृहरूका लागि सदा प्रिय त्यस नदीको किनारमा श्राद्ध गर्छ त्यो पितृ र देवताहरूलाई खुसी बनाएर पितृलोक जान्छ। हे अगस्त्य मुनि ! त्यहाँ राम्रा-नराम्रा जस्ता काम गरिन्छन् ती सबै अक्षय हुन्छन्, यसमा शङ्का छैन। चारै दिशातिर तीन योजनसम्म उत्तम वराहको क्षेत्र बताइएको छ। पर्वतको त्यो क्षेत्र मोक्षदायक क्षेत्र हो भनेर जान्नुहोस्। यसको मध्यभागमा जति पनि जलका धाराहरू उत्पन्न भएका छन्, ती सबै उत्तम तीर्थ हुन् ॥८-१४॥

---

१. महाशैलम्, इति न.सं.पु.पाठः। २. कौशिकी, इति न.सं.पु.पाठः। ३. ववाह, इति न.सं.पु.पाठः।
४. सर्वैनसः प्रणाशिनी, इति न.सं.पु.पाठः। ५. ताः सर्वाः वरतीर्थाः, इति न.सं.पु.पा७ः

त्रियोजनं समाख्यातं वाराहक्षेत्रमुत्तमम्। चतुर्द्दिक्षु गिरेस्तस्य जानीयात्क्षेत्रमुत्तमम् ॥१२॥
वराहपर्वते कूटः ब्रह्मह्रदः सुनिर्मितः। ब्रह्मणा च पुरा सम्यक्सर्वतीर्थोत्तमोत्तमः ॥१५॥
तस्मिन्तीर्थे महापुण्ये पवित्रे विधिनिर्मिते। मर्त्यः करोति यः स्नानं ब्रह्मत्वमाप्नुयाद् ध्रुवम् ॥१६॥
तत्र स्नात्वा समर्च्चन्ति वाराहं विष्णुमव्ययम्। भक्तियुक्ताश्च ये मर्त्यास्तेषां पुण्यफलं शृणु ॥१७॥
मोहकञ्चुकनिर्मुक्ता ज्ञानकञ्चुकसंवृताः। मातापितॄन्[६] समुद्धृत्य दशपूर्वान्दशाऽपरान् ॥१८॥
सङ्गीतैर्नर्तनैर्द्दिव्यैः किङ्किणीजालमण्डितैः सूर्य्यायुतप्रतीकाशैर्विमानैर्देवसेवितैः ॥१९॥
देवकन्याकरोद्धूतैश्चामरैश्च प्रवीजिताः[७]। गीतवाद्यमहोल्लासैरप्सरोगणसेविताः[८] ॥२०॥
शङ्खचक्रगदापद्मधारिभिस्तैश्चतुर्भुजैः। विष्णुलोकं प्रगच्छन्ति विष्णुलाञ्छनलाञ्छिताः ॥२१॥
पुण्यात्मानो हि तद्यानैर्गच्छन्ति विष्णुमन्दिरम्[९]। सप्तद्वीपान्परिभ्रम्य पुराणां दर्शनैः सह[१०] ॥२२॥
भुवनानि च सानन्दं विलोक्य सप्त[११] सर्वशः। सदेहाश्च मुदा युक्ताः गच्छन्ति[१२] परमं पदम् ॥२३॥
विमुक्ता बहवो म्लेच्छा ज्ञानधर्मविवर्ज्जिताः। तत्र दर्शनमात्रेण वराहं विष्णुविग्रहम् ॥२४॥
तस्माच्चोत्तरशृङ्गे च वराहरूपविष्णुना। लिङ्गमाराधितं पूर्वं स्वायम्भुवञ्च भक्तितः ॥२५॥
वराहेशस्ततः ख्यातो धरण्युद्धरणाय च। ततो वरं हरिर्लब्ध्वा दधार धरणीं पुरा ॥२६॥
तस्य दर्शनमात्रेण बहुपापैर्युतोऽपि वा। विधूय सर्वपापानि रुद्रलोकं स गच्छति ॥२७॥
यः प्रपूजति तल्लिङ्गं तन्मन्त्रैर्भक्तिपूर्वकम्। न पुनर्जायते भूमौ परं शिवं स गच्छति ॥२८॥

---

तिनीहरूमा स्नान गर्दा स्वर्ग प्राप्त हुन्छ। जुन मानिसले कोशीमा स्नान गरेर कोका पर्वतमा आरोहण गर्दछ, त्यसले पाइलैपिच्छे अश्वमेध यज्ञ गरेको भन्दा पनि बढी फल प्राप्त गर्दछ ॥१२-१४॥

वराहपर्वतको शिखरमा ब्रह्मह्रद छ। सम्पूर्ण तीर्थहरूमा उत्तम यो तलाउ ब्रह्माजीले निर्माण गर्नुभएको थियो। ब्रह्माजीले बनाएको अत्यन्त पवित्र त्यस तीर्थमा जुन मानिसले स्नान गर्दछ, त्यसले अवश्य पनि ब्रह्मत्व प्राप्त गर्छ। त्यस तीर्थमा स्नान गरेर भक्तिपूर्वक जसले अव्यय विष्णुका अवतार वराहको पूजा गर्दछन् तिनीहरूको पुण्यफल सुन्नुहोस्। तिनीहरूले मोहरूपी काँचुली त्यागेर ज्ञानरूपी चोलो लगाई दश कुल अघि र दश कुल पछिका पितृवंश तथा मातृवंशको उद्धार गर्छन् ॥१५-१८॥

त्यसपछि उनीहरू देवताद्वारा सुसेवित सूर्यको जस्तो तेजिलो विमानमा चढेर विष्णुका हतियारका चिह्नले युक्त हुँदै विष्णुलोक जान्छन्। त्यसबेला विष्णुका कन्याहरूले तिनीहरूको सेवा गरिरहेका हुन्छन्, चमर हल्लाइरहेका हुन्छन्, गीत गाउँदै बाजा बजाइरहेका हुन्छन् र त्यहाँ ठूलो उत्सव हुन्छ। यसैगरी अप्सराले तिनीहरूको सेवा गरिरहेका हुन्छन्, दिव्य सङ्गीत, नृत्य तथा घुँघुराको आवाज घन्किरहेको हुन्छ। उनीहरूले विष्णुका चिह्न शङ्ख, चक्र, गदा र पद्म धारण गरेका हुन्छन् र तिनीहरूको चार हात हुन्छ। पुण्यात्माहरू त्यसै यानमा चढेर सात द्वीपभित्र रहेका विभिन्न नगरहरू घुम्दै तिनीहरूको दर्शन गर्दै विष्णुलोक जान्छन्। तिनीहरू चारैतिरबाट सातै भुवनको दर्शन गरेर आनन्दपूर्वक सशरीर परमपदमा प्राप्त हुन्छन्। ज्ञान तथा धर्मले रहित भएका धेरै म्लेच्छहरू पनि विष्णुको शरीर ग्रहण गर्ने वराह अवतारको दर्शनमात्रले मुक्त भएका छन् ॥१९-२४॥

त्यसैले त्यसको उत्तरपट्टिको शिखरमा वराहरूपधारी विष्णुले स्वयं प्रकट भएका वराहेश्वर शिवलिङ्गको भक्तिपूर्वक आराधना गर्नुभएको थियो। वराहले आराधना गर्नुभएको हुनाले यस लिङ्गलाई वराहेश्वर भनिएको छ। भगवान् विष्णुले पृथ्वीको उद्धारका निमित्त आराधना गरी उहाँबाट वर पाएर पृथ्वीको उद्धार गर्नुभएको थियो। जतिसुकै पापी भए उहाँको दर्शनमात्रले पनि त्यो पापी सम्पूर्ण पापहरूबाट मुक्त भई रुद्रलोक जान्छ। जसले त्यस लिङ्गलाई उहाँकै मन्त्रद्वारा भक्तिपूर्वक पूजा गर्दछ, त्यसले यस पृथ्वीमा पुनर्जन्म लिनुपर्दैन। त्यो उत्तम शिवलोक जान्छ ॥२५-२८॥

---

६. पितॄन् मातॄन्, इति न.सं.पु.पाठः। ७. प्रधूयकैः, इति न.सं.पु.पाठः। ८. सेवितैः, इति न.सं.पु.पाठः।
९. विष्णुलोकम्, इति न.सं.पु.पाठः। १०. संदर्श्य विविधं पुरम्, इति न.सं.पु.पाठः।
११. सप्तानि ते चालोक्य हि सर्वशः, इति न.सं.पु.पाठः। १२. प्राप्स्यन्त, इति न.सं.पु.पाठः।

अगस्त्य उवाच

केन प्रकाशितो देवो वराहो विष्णुरूपधृक्। को मुक्तश्च महासेन वद मे भक्तवत्सल ॥२९॥

स्कन्द उवाच

आसीद् ब्रह्मपुरी नाम नगरी लोकविश्रुता। गङ्गायमुनयोर्मध्ये बहुविप्रैश्च सेविता ॥३०॥
तस्यां कश्चिद् द्विजश्चाऽऽसीद्विष्णुशर्मेति विश्रुतः। ब्रह्मकर्मसमायुक्तः सर्वविद्याविशारदः ॥३१॥
किञ्चित्काले विरक्तोऽभूद् गृहस्थोऽपि महामतिः। निरगच्छद् गृहाद्विप्रः परित्यज्य प्रियां प्रियम् ॥३२॥
परिभ्रम्य च तीर्थानि मेदिन्यां यानि सर्वशः। काश्यां स श्रुतवान् सद्भ्यः[13] कौशिक्याश्च प्रसंशनम् ॥३३॥
श्रुत्वा तस्या हि माहात्म्यमतिहर्षितवान् द्विजः। स्नातुं मनो दधे धीरो ह्यगमत्कौशिकीतटम् ॥३४॥
ततोऽगमत्स कौशिक्यां सन्तीर्य सुरनिम्नगाम्। तस्यां सस्नौ मुदा पूर्वं विष्णुभक्तश्च मन्त्रवित् ॥३५॥
ततस्तं ददृशुर्म्लेच्छाः स्नानजपरतं रहः[14]। मांसाशिनो गृहीत्वा च तत्र हन्तुं समुद्यताः ॥३६॥
भिल्लुर्नाम महाव्याधः सखीन्म्लेच्छान्यषेधयत्। हन्तुं समुद्यतान्दृष्ट्वा स्नातकं द्विजसत्तमम् ॥३७॥

भिल्लुरुवाच

रे रे म्लेच्छाः शृणुध्वं मे वचनं हितभाषितम्। न हन्तव्यश्च युष्माभिः स्नातकोऽयं महामतिः ॥३८॥
विरक्तो हि भ्रमंश्चैको रूपवान्निर्धनस्तथा। हत्वा किं प्राप्यतेऽस्माभिर्जीर्णवस्त्रं सशोणितम्[15] ॥३९॥
एतस्मै वरविप्राय पुत्रीं दास्यामि चाऽद्य च। ततो मम गृहे म्लेच्छा तिष्ठन्तु दासरूपतः[16] ॥४०॥

---

अगस्त्य मुनिले भन्नुभयो – हे भक्तवत्सल कार्तिक स्वामी ! विष्णुको रूप धारण गर्ने वराह भगवान्लाई कसले प्रकाशमा ल्याएको थियो? र उहाँको आराधना गरेर को मुक्त भएको थियो ? मलाई बताइदिनुहोस् ॥२९॥

कार्तिक स्वामीले भन्नुभयो – अघि गङ्गा र यमुना नदीको बीचमा अनेक ब्राह्मणहरूको बसोवास भएको प्रसिद्ध ब्रह्मपुरी नाम गरेको सहर थियो। त्यस सहरमा विष्णु शर्मा नामका कुनै ब्राह्मण थिए। उनी वैदिककर्ममा तत्पर र सम्पूर्ण विद्यामा निपुण थिए। कुनै समयमा गृहस्थी भए पनि ती बुद्धिमान् ब्राह्मणलाई वैराग्य आयो। त्यसैले उनी आफ्नी पत्नी र प्रिय वस्तुलाई छोडी घरबाट निस्किए। पृथ्वीमा रहेका सम्पूर्ण तीर्थहरूको भ्रमण गरेर उनी काशी पुगे। उनले काशीमा ब्राह्मणहरूबाट कोशी नदीको माहात्म्य सुने ॥३०–३३॥

कोशीको माहात्म्य सुनेर ती धीर ब्राह्मण अत्यन्त प्रसन्न भए। स्नान गर्ने इच्छा गरेर उनी कोशीको किनारमा गए। विष्णुका भक्त तथा मन्त्रज्ञ ती ब्राह्मण गङ्गा तरेर कोशीमा गएका थिए। त्यहाँ पुगेर उनलेसुरुमा आनन्दपूर्वकत्यहाँ स्नान गरे। स्नान गरेर एकान्तमा जप गर्न लागेका ती ब्राह्मणलाई म्लेच्छहरूले देखे र मांसाहारी ती म्लेच्छहरू उनलाई मार्न तयार भए।स्नान गरेर बसेका ब्राह्मणलाई मार्न लागेको देखेर भिल्लु नाम गरेको व्याधाले आफ्ना साथी म्लेच्छहरूलाई नमार्न भन्यो ॥३४–३७॥

भिल्लुले भन्यो – हे म्लेच्छहरू हो ! मैले राम्रो कुरा भनेको छु, सुन। तिमीहरूले स्नान गरेको यस बुद्धिमान् ब्राह्मणलाई मार्नुहुँदैन। विरक्त, सम्पत्ति नभएको र सुन्दर यो ब्राह्मण घुम्दै यहाँ आएको छ। तसर्थ हामीले यसलाई मारेर रक्ताम्य भएका थोत्रा लुगाबाहेक के पाउँछौँ ?। यस ब्राह्मणलाई लगेर म आजै आफ्नी छोरी दिन्छु। हे म्लेच्छहरू हो ! तिमीहरू मेरो घरमा सेवक भएर बस ॥३८–४०॥

---

१३. काश्यां श्रुतः स विप्रेभ्यः, इति न.सं.पु.पाठः।
१४. स्नात्वा जप्तं हि निर्जने, इति न.सं.पु.पाठः।
१५. च साम्रजम्, इति न.सं.पु.पाठः।
१६. दासत्वेन प्रतिष्ठतु, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

ततो निषिध्य सर्वांस्तान्भिल्लुर्म्लेच्छांस्तदा मुने। समानयद् गृहं तञ्च वाचा मधुरयन् मुहुः ॥४१॥
ततो भिल्लुवरो म्लेच्छो ददौ तस्मै द्विजन्मने। पुत्री सुवदनानाम्नी[१७] विवाहविधिना मुने ॥४२॥
द्विजोऽपि निष्प्रयत्नोऽभूद् वृकाणाञ्च मृगो यथा। किञ्चित्कालान्तरे विप्रः पुत्रवाँश्चाभवन्मुने ॥४३॥
सङ्गदोषात्तदा सोऽपि सर्वाहारी द्विजोऽभवत्। हायनान्यनेकानि निनाय मृगयादिभिः[१८] ॥४४॥
कार्तिके मासि विप्रेश पूर्णिमायां निशान्तरे। मृगयाश्रमसंश्रान्तो सुष्वाप सुसुखं द्विजः ॥४५॥
तदा ब्राह्मे मुहूर्त्ते सोऽश्रृणोन्नादं द्विजो घनम्[१९]। मृदङ्गतालवाद्यादिजनितं[२०] गीतसुस्वरम् ॥४६॥
ततोऽपृच्छत्प्रियां विप्रः श्रुत्वा नादं तमद्भुतम्। श्रवणैश्च सुखं पेयं बहुवाद्योद्भवं शिवम् ॥४७॥

विष्णुशर्मोवाच

प्रिये सुवदने चाऽद्य किमद्भुतमभून्निशि। बहुवाद्योद्भवं नादमश्रौषं गीतकानि च[२१] ॥४८॥
भेरीणाञ्च मृदङ्गानां जलजानाञ्च निःस्वनैः[२२]। नर्त्तकनूपुराणाञ्च सम्मिश्रितं रवं प्रिये ॥४९॥
अत्यद्भुतो महानादो बहुकोलाहलं महत्। एतच्छैलोपरि प्राच्यां प्रिये वद हि तच्च यत् ॥५०॥

सुवदनोवाच

द्वादश्यां प्रतिमासञ्च कोलाहलो महाद्भुतः[२३]। भवत्येव महानादः प्रिय[२४] ब्राह्मे मुहूर्तके ॥५१॥
नृत्यन्त्यप्सरसः[२५] सर्वा गीतवाद्यैर्द्रुतैस्तथा। वराहाग्रे मुदा स्वामिन् वर्षति[२६] पुष्पसन्ततिः ॥५२॥

---

कार्तिक स्वामीले भन्नुभयो – त्यसपछि भिल्लुले ती सबै म्लेच्छहरूलाई हटाएर मधुर वचनद्वारा फकाउँदै ती ब्राह्मणलाई आफ्नो घरमा ल्यायो। हे अगस्त्य मुनि ! त्यस म्लेच्छ भिल्लुले ती ब्राह्मणलाई विधिपूर्वक सुवदनी नाम गरेकी आफ्नी छोरी विवाह गरेर समर्पण गऱ्यो। त्यसपछि ब्वाँसोको अधिल्तिर परेको मृगजस्तै ती ब्राह्मण पनि निष्प्रयत्न भए। विवाहको केही समयपछि ती ब्राह्मण पुत्रवान् भए। सङ्गतको दोषले गर्दा ती ब्राह्मण पनि सर्वाहारा बने। शिकार खेल्ने वृत्ति अपनाएर उनले केही वर्ष बिताए ॥४१-४४॥

कार्तिक महिनाको पूर्णिमाको रातमा दिउसको शिकार खेल्दाको थकाइले गर्दा ती ब्राह्मण आनन्दपूर्वक सुतेका थिए। ब्राह्ममुहूर्तमा उनले मादल, ताल, बाजा र गीतबाट उत्पन्न मीठो स्वर भएको नानाथरी शब्द सुने। त्यसपछि ब्राह्मणले विभिन्न बाजाबाट उत्पन्न भएको कल्याणकारी श्रुतिमनोहर त्यो अद्भुत शब्द सुनेर आफ्नी प्रियतमा सुवदनीसँग सोधे ॥४५-४७॥

विष्णुशर्माले भने – हे प्रिये ! हे सुवदने ! आज रातमा के आश्चर्य भयो ? विभिन्न बाजाबाट निस्किएको ध्वनि र आनन्ददायक गीत सुनियो। हे प्रिये ! दमाहा, कर्णाल, मादल, घुँघुरा आदि बाजाको मिश्रण भएको शब्द सुनियो। हे प्रिये ! यो पहाडको पूर्वतिर अत्यन्त कोलाहलले युक्त भएको ठूलो यो शब्द ज्यादै आश्चर्यजनक छ। त्यो जे हो, मलाई भन ॥४८-५०॥

सुवदनीले भनिन्– प्रत्येक महिना द्वादशीका दिन ब्राह्ममुहूर्तमा सधैँ अत्यन्त आश्चर्यजनक कोलाहलले युक्त भएको यो आवाज आउँछ। यहाँ सबै अप्सराहरू गीत गाउँदै, बाजा बजाउँदै वराह भगवान्‌को अगाडि आनन्दपूर्वक नाँच्छन् र त्यहाँ पुष्पवृष्टि हुन्छ ॥५१-५२॥

---

१७. सुवदनीं नाम्नीम्, इति न.सं.पु.पाठः।
१८. कञ्चित्कालं निनाय हायनान्, इति न.सं.पु.पाठः।
१९. च नानानादं शृणोति सः, इति न.सं.पु.पाठः।
२०. नामुद्भवम्, इति न.सं.पु.पाठः।
२१. गीतञ्च सुखदोद्भवम्, इति न.सं.पु.पाठः।
२२. निःस्वनम्, इति न.सं.पु.पाठः।
२३. कोलाहलं महाद्भुतम्, इति न.सं.पु.पाठः।
२४. प्रिय भवेत्सदानादमेतद्, इति न.सं.पु.पाठः।
२५. नृत्यन्ति चाप्सरः, इति न.सं.पु.पाठः।
२६. भर्त्तश्चावर्षत, इति न.सं.पु.पाठः।

तत्रास्माभिर्न[२७] गन्तव्यं गिरिशृङ्गे भयङ्करे। द्रष्टुं तत् कस्य सामर्थ्य[२८] गन्ता चेद्धि विलीयते ॥५३॥
यो यो गच्छति शृङ्गेऽद्रेः स कोऽपि न निवर्त्तते। एवं प्रिय विलीयन्ते बहुम्लेच्छाः स्म तत्र च ॥५४॥
तदादि च प्रभो कोऽपि गच्छति स्म कदापि न। त्वयाऽपि च न गन्तव्यं यदि जीवितुमिच्छसि[२८क] ॥५५॥

स्कन्द उवाच

समाकर्ण्य ततो विप्र भार्य्याया वचनं तदा। द्रष्टुमियेष शैलेन्द्रे वराहं विष्णुमव्ययम् ॥५६॥
प्रातःकाले समुत्थाय गच्छति स्म स कौशिकीम्। तस्याञ्च विधिवत्स्नात्वा सन्तर्प्यर्षीन्सुरान् पितॄन् ॥५७॥
आरुरोह ततो विप्रो वराहाद्रिं मुदा युतः। ॐ नमस्ते वराहाय चेति मन्त्रं पठन्पदे ॥५८॥

स्कन्द उवाच

ददर्श तत्र देवेशं वराहं ब्रह्म चाऽव्ययम्। सर्वदेवावतारैश्च वराहैः संवृतं मुने ॥५९॥
तत्र ह्रदं ददर्शाऽऽदौ सर्वतीर्थोत्तमोत्तमम्। तत्र स्नात्वा द्विजः पूर्वं गच्छति स्म तदालयम् ॥६०॥
वराहरूपिणं देवं विप्रोऽपश्यन्महाद्भुतम्। नृत्यगीतैः सुरैर्भक्त्या चाऽप्सरोभिः प्रसेवितम् ॥६१॥
अपूपुजत्ततो विप्रो विष्णुं वराहरूपिणम्। परिक्रम्य पुनर्भक्त्या साष्टाङ्गञ्च[२९] ननाम तम् ॥६२॥

वराह उवाच

वरं वरय हे भक्त भक्त्या ते तोषितोऽप्यहम्। लीयन्ते स्म मयि म्लेच्छा अज्ञानाद् दर्शनान्मम[३०] ॥६३॥
हे वत्स ते वरं दास्ये सर्ववरोत्तमोत्तमम्। भवत्विन्द्रो भवानार्य्य युगानामेकसप्ततिम् ॥६४॥
ततः कालावसाने त्वं मोक्षञ्च प्राप्नुयाः पुनः। लीनत्वान्मयि[३१] हे भक्त देहोऽसि मे न संशयः ॥६५॥

---

त्यस भयानक पर्वतको शिखरमा जानुहुँदैन। त्यो हेर्ने सामर्थ्य कसको छ र ? त्यहाँ जाने मान्छे त्यहीँ हराउँछ। जो-जो मानिस पर्वतको त्यस शिखरमा जान्छन्, ती फर्कदैनन्। हे प्रिये ! धेरै म्लेच्छहरू त्यहाँ गएर यसरी नै हराएका छन्। हे प्रभो ! त्यस समयदेखि कोही पनि त्यहाँ जाँदैनन्। यदि बाँच्ने इच्छा छ भने तपाईं पनि त्यहाँ नजानुहोस् ॥५१-५५॥

कार्तिक स्वामीले भन्नुभयो - पत्नीको यस्तो कुरा सुनेर ती ब्राह्मणले पर्वतशिखरमा गएर अविनाशी विष्णुको अवतारस्वरूप वराहको दर्शन गर्ने विचार गरे। ती ब्राह्मणले बिहानै उठेर कौशिकीमा गई त्यहाँ विधिपूर्वक स्नान गरेर ऋषि, देवता एवं पितृहरूलाई तर्पण दिए। त्यसपछि पाइलैपिच्छे 'ॐ नमस्ते वराहाय' अर्थात् वराह भगवान्लाई नमस्कार छ भन्ने मन्त्र पढ्दै प्रसन्नताका साथ ती ब्राह्मण वराहपर्वतमा चढे ॥५६-५८॥

हे अगस्त्य मुनि ! त्यहाँ उनले सम्पूर्ण देवताहरूको अवतारमय वराहहरूले घेरिएका अव्यय वराह भगवान् लाई देखे। त्यहाँ उनले पहिले सम्पूर्ण तीर्थहरूमा श्रेष्ठ तीर्थको रूपमा रहेको तलाउलाई देखे। त्यसपछि उनले सुरुमा त्यहाँ स्नान गरे र मन्दिरमा गए। त्यहाँ ब्राह्मणले देवता र अप्सराहरूको नाँच-गान आदिद्वारा सुशोभित, अत्यन्त आश्चर्यजनक वराह रूप धारण गर्ने भगवान् विष्णुलाई देखे। ती ब्राह्मणले वराहरूपधारी भगवान् विष्णुको भक्तिपूर्वक परिक्रमा गरेर आठै अङ्गले नमस्कार गर्दै पूजा गरे ॥५९-६२॥

वराह भगवान्ले भन्नुभयो - हे भक्त ! तिम्रो भक्तिबाट म प्रसन्न भएँ। तिमीलाई जे इच्छा छ, त्यो वर माग। अज्ञानी म्लेच्छहरू मलाई देख्नासाथ ममा लीन हुन्छन्। हे बाबु ! म तिमीलाई सबैभन्दा उत्तम वर दिन्छु। तिमी ७१ युगसम्म इन्द्र बन।त्यो समय सकिएपछि तिमीले मोक्ष प्राप्त गर्नेछौ। हे भक्त ! त्यसपछि ममा नै लीन भएर तिमी मेरो शरीर बन्नेछौ, यसमा कुनै सन्देह छैन ॥६३-६५॥

---

२७. तत्रापि च न, इति न.सं.पु.पाठः।
२८. अष्यङ्गैश्च, इति न.सं.पु.पाठः।
२८क. जीवितुमुत्सहेः, इति न.सं.पु.पाठः।
२९. कश्च सामर्थ्यो, इति न.सं.पु.पाठः।
३०. अज्ञानान्मम दर्शनात्, इति न.सं.पु.पाठः।
३१. मयि लीनाच्च हे भक्त मम देहो न संशयः, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

तस्मिन्कालेऽवततार विमानञ्चाऽपि[३२] पुष्करात्। विष्णुकन्यासमायुक्तं बहुपारिषदैर्वृतम् ॥६६॥
शङ्खं चक्रं गदां पद्मं[३३] हस्तैर्बिभ्रच्च कौस्तुभम्। विप्रमारोहयन्नत्र विष्णुमिवाऽपरं गणाः ॥६७॥
दिवि दुन्दुभयो नेदुः पुष्पवृष्टिर्ववर्ष च। साध्विति वादिनः सिद्धा गन्धर्वपतयो जगुः ॥६८॥
ततोऽनयन्गणा विष्णोर्विष्णुलोकं सनातनम्। कालादिन्द्रोऽभवद्विप्र सैका युगसप्ततिः ॥६९॥
पत्नी च तस्याऽभिचुकोप तस्मै चाऽमेध्यहस्ताऽशु ततः प्रविष्टा।
दृष्ट्वा च देवञ्च वराहरूपं स्नातुञ्च नद्या ह्यगमच्च तीरे ॥७०॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे वराहक्षेत्रवराहमाहात्म्यं नाम चतुस्त्रिंशोऽध्यायः ॥३४॥

---

कार्तिक स्वामीले भन्नुभयो – त्यही बेला विष्णुकन्याले युक्त भएको र विभिन्न पार्षदहरूले सुसज्जित भएको विमान आकाशबाट ओर्लियो। शङ्ख, चक्र, गदा र पद्म हातमा लिएका एवं कौस्तुभमणि लगाएका ती ब्राह्मणलाई गणहरूले दोस्रो विष्णुजस्तै गरी विमानमा चढाए। उनलाई विमानमा चढाएपछि आकाशमा नगराहरू बजे, पुष्पवृष्टि भयो र साधुवाद दिँदै सिद्ध तथा गन्धर्वराजहरूले जयगान गरे। त्यसपछि गणहरूले उनलाई नित्य स्थायी विष्णुलोकमा लगे। समय बित्दै गएपछि ती ब्राह्मण ७१ युगसम्म इन्द्र बने ॥६९॥

यता ती ब्राह्मणकी पत्नी सुवदनी उनीसँग अत्यन्त रिसाइन्, हात अपवित्र हुँदाहुँदै पनि भगवान्को मन्दिरमा पसेर दर्शन गरिन् र स्नान गर्न कौशिकी नदीका तीरमा गइन् ॥७०॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गत हिमवत्खण्डको वराहक्षेत्रमाहात्म्य नामक चौतिसौं अध्याय पूर्ण भयो।

---

३२. विमानञ्च अवततार, इति न.सं.पु.पाठः।

३३. शङ्खचक्रगदापद्मम्, इति न.सं.पु.पाठः।

# पञ्चत्रिंशोऽध्यायः

## भगवतो वराहस्य माहात्म्यम्

अगस्त्य उवाच

किमकुर्वंस्तदा स्कन्द विष्णुं विना दिवौकसः । सुरलोके हरौ क्षित्यां कोलरूपं समाश्रिते ॥१॥
कथमाराधितो देवैः कोलरूपो हरिस्तदा । एतच्छ्रोतुमनाः सोऽहं त्वत्तः सर्वविदो विभो[1] ॥२॥

स्कन्द उवाच

हिरण्याक्षे हते दैत्ये विष्णुना कोलरूपिणा । साधु साध्विति कृत्वाऽशु तत्राऽऽययुः सुरर्षयः ॥३॥
ब्रह्मेश्वरौ हरिः शक्रो दिक्पालसोमभास्कराः । परित्यज्य स्वकांल्लोकान्विष्णुशैलं समाययुः ॥४॥
प्रणेमुस्त्रिदशा विष्णुं कोलरूपं मुहुर्मुहुः । वक्त्रैर्वेदान्पठन् ब्रह्माऽनामयत् दण्डवत्तनुम्[2] ॥५॥
भगवते वराहाय मन्त्रमेनं[3] धिया पठन् । तारपूर्वं नमोऽन्तञ्च[4] नेमुर्देवर्षयो मुहुः ॥ ६॥
सेविरे त्रिदशा भक्त्या कोलावतारकं मुदा । तत्षोडशोपचारैश्च ब्रह्मादयो घटोद्भव ॥७॥
गन्धर्वाप्सरसो नृत्यैर्भेरीमृदङ्गतालकैः । ऋषयः स्वस्तिवाक्यैस्तं स्ववृत्तिभिः प्रसेविरे ॥८॥
ववर्ष पुष्पवृष्टिश्च नेदुर्दुन्दुभयो मुहुः । लाजासारोऽपतद् व्योम्नो दिव्यधूपैः प्रधूपितम्[5] ॥९॥
ददृशुरमरा विष्णुं कोलाँस्तांश्च[6] महत्तरान् । महीधरतले व्याप्तान् कोटिशोऽर्बुदसंख्यकान् ॥१०॥
शङ्खचक्रायुधान् दिव्यान् गन्धमाल्यैस्तदर्च्चितान् । यज्ञरूपाँस्तदा देवाः प्रेक्ष्य तान् मुमुहुर्भृशम् ॥११॥
प्रेक्षया विश्वरूपाणां स्मारं स्मारं पदानि च[7] । क्षणाप्तचेतसोऽगस्त्य तुष्टुवुः कोलरूपिणम् ॥१२॥

---

### अध्याय- ३५ भगवान् वराहको माहात्म्य

अगस्त्यले भन्नुभयो – हे कार्तिक स्वामी ! भगवान् विष्णुले वराह रूप धारण गरेपछि विष्णु नभएका देवताहरूले स्वर्गमा के गरे ? देवताहरूले कसरी वराहरूपी भगवान्‌को आराधना गरेका थिए? सम्पूर्ण वृत्तान्तका ज्ञाता हजुरबाट म त्यो कुरा सुन्न चाहन्छु ॥१-२॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य ! वराहरूपधारी विष्णुले हिरण्याक्षको वध गरेपछि साधुवाद दिँदै देवता तथा ऋषिहरू तत्काल वराहक्षेत्रमा आए। ब्रह्मा, शङ्कर, हरि, इन्द्र, दिक्पालहरू, चन्द्रमा तथा सूर्यलगायत सबैले आफ्नो लोक छोडेर विष्णुपर्वत अर्थात् वराहपर्वतमा आए। देवताहरूले वराहरूपधारी विष्णुलाई बारम्बार प्रणाम गरे। ब्रह्माले चारै मुखबाट वेद उच्चारण गर्दै शरीरलाई दण्डाकार बनाई भूमिमा पस्रिएर दण्डवत् प्रणाम गरे। सम्पूर्ण देवता तथा ऋषिहरूले ॐ नमो भगवते वराहाय भन्ने मन्त्र दीर्घ स्वरले उच्चारण गर्दै वराह भगवान्‌लाई बारम्बार नमस्कार गरे ॥३-६॥

हे अगस्त्य मुनि ! ब्रह्मा आदि देवताले प्रसन्नन्नतापूर्वक षोडशोपचारविधि तथा तीनै किसिमका भक्तिले युक्त भई वराह अवतारधारी विष्णुको आराधना गरे। गन्धर्व र अप्सराले कर्नाल, मादल, ताल आदि बाजा बजाउँदै नाचेर तथा ऋषिहरूले स्वस्तिवाचन गरेर आ–आफ्नो वृत्तिअनुसार उहाँको सेवा गरे। त्यसपछि उनीहरूले पुष्पवृष्टि गरे, बारम्बार नगराहरू बजाए, आकाशबाट दिव्यधूप धुप्याउँदै लाजाको वर्षा पनि गरे ॥७-९॥

देवताहरूले पर्वतभरि व्याप्त ठूला-ठूला वराह तथा विष्णुलाई करोडौं र अरबौंको सङ्ख्यामा देखे। शङ्ख, चक्र तथा हतियार लिएका, चन्दन र मालाद्वारा पूजित यज्ञरूप दिव्य वराहलाई देखेर देवताहरू अत्यन्त मोहित भए। तुरुन्त चेतना प्राप्त गरी देवताहरूले करोडौं र अरबौंको सङ्ख्यामा रहेका विश्वरूप वराहहरूको चरणकमलको सम्झना गरेर वराहरूप धारण गर्नुहुने भगवान् विष्णुको स्तुति, वन्दना गरे ॥१०-१२॥

---

१. एतच्छ्रोतुमनाः सोऽहं त्वयि सर्वविदे विभो, इति न.सं.पु.पाठः ।
२. ब्रह्मा दण्डवत्पातयं तनुम्, इति न.सं.पु.पाठः ।
३. एतन्मन्त्रम्, इति न.सं.पु.पाठः ।
४. नमश्चान्ते, इति न.सं.पु.पाठः ।
५. लाजासारं तथा व्योम्नो दिव्यधूपैः प्रधूपयत्, इति न.सं.पु.पाठः ।
६. कोलरूपान्, इति न.सं.पु.पाठः ।
७. प्रेक्ष्यैव विश्वरूपान्ते चेतसि स्मृत्य तत्पदान्, इति न.सं.पु.पाठः ।

देवा ऊचुः

ॐ नीलमेघाभदेहाय वाराहाय नमो नमः। तडिद्विलेखकाङ्गाय नमस्तेऽहर्निशं हरे ॥१३॥
सितोग्रदंष्ट्ररूपाय चक्राक्षचिह्नशोभिने[७]। सूर्याभाय वराहाय प्रणताः स्मो हि सन्ततम् ॥१४॥
वेदाङ्गपादयूपाय दर्भरोमाङ्कदेहिने। अग्निजिह्वाय देवाय नमस्ते चरणेषु ते[८] ॥१५॥
तुण्डस्रुवाज्यनासाय सोमघोषाय ते नमः। मन्त्रसन्ध्याञ्चिताङ्गाय यज्ञरूपाय वै नमः ॥१६॥
त्रैलोक्योद्धरणार्थाय वराहरूधारिणे। पवित्राङ्गावताराय नमस्ते परमाय च ॥१७॥
देहाय देहिने देहाश्रितसत्त्वाय सम्भवे। चैतन्याय विवेकाय जगतां साक्षिणे नमः ॥१८॥
कोषस्थाय च कोषाय वर्णरूपाय ते नमः। अनाहताय नादाय सर्वनादाय ते नमः ॥१९॥
मनोधीचित्तकोषांशोज्जृम्भकेन्द्रियवर्ष्मिणे। चैतन्यदृढविद्याभिः सर्वानन्दप्रदायिने[९] ॥२०॥
ब्रह्मानन्दाय पूर्णाय सदानन्दाय वै नमः। कैवल्यानन्दरूपाय चिदानन्दाय ते नमः ॥२१॥
यस्य दर्शनमात्रेण कैवल्यं प्राप्य सन्नृपाः[१०]। नित्यानन्दं प्राप्नुवन्ति तस्मै देवाय ते नमः ॥२२॥

स्कन्द उवाच

एवं स्तुत्वा सुरास्तस्मै प्रणेमुर्दण्डवन्मुहुः। ब्रह्मा विज्ञापयामास वृत्तान्तं सुरसद्मनः ॥२३॥

---

देवताहरूले भने – नीलो मेघको जस्तो कान्ति भएका वराह भगवान्लाई बारम्बार नमस्कार छ। बिजुलीको रेखाजस्तै अङ्ग भएका हे हरि ! हजुरलाई हामी रातदिन नमन गर्दछौं। सेतो ठूलो दाँत भएका, शङ्ख–चक्र आदि चिह्नले सुशोभित, सूर्यजस्तै तेजोमय हजुरलाई हामी बारम्बार नमस्कार गर्दछौं। हामी वेदाङ्गका चार पाउरूपी मौलो भएका, कुशरूपी काख एवं शरीर भएका, अग्नि नै जिब्रो भएका अपूर्व ईश्वर हजुरको चरणमा प्रणाम गर्दछौं। थुतुनो नै सुरो, नाक नै घ्यू, सामगान नै घुर्‌घुर् शब्द भएका हजुरलाई नमस्कार छ। तीनै लोकको उद्धारका लागि यस्तो रूप लिने मन्त्ररूप, सन्ध्यारूप र यज्ञरूप शरीर भएका तपाईंलाई नमस्कार छ। संसारको उद्धारका लागि पवित्र अङ्ग भएका वराहशरीर धारण गर्नुहुने परमपुरुषलाई नमस्कार छ ॥१३–१७॥

शरीररूपमा, शरीरधारीका रूपमा, शरीरभित्र रहने तत्वका रूपमा, चैतन्यको रूपमा, विवेकको रूपमा र जगत्को साक्षीको रूपमा रहनुभएका कल्याणरूप भगवान् वराहलाई हामी नमस्कार गर्दछौं। कोषरूपमा रहेका पञ्चकोषस्वरूप तथा वर्णस्वरूप हजुरलाई नमस्कार छ। अनाहतस्वरूप भएका, नादस्वरूप लिने र सबैलाई सम्पूर्ण कुरा प्रदान गर्ने हजुरलाई नमस्कार छ। मन, बुद्धि, चित्त तथा शरीरभित्र स्थित, पाँचै कोशका अंशहरूलाई उद्‌बोधन प्रदान गर्ने, इन्द्रियरूप कवच धारण गर्नुहुने परमात्मा वराहलाई नमस्कार गर्दछौं। जुन वराह रूप परमात्माको करुणाबाट मानिसहरूको जुन विद्यातत्व सुदृढ हुन्छ, भक्तहरूलाई त्यस्तो विद्यातत्व प्रदान गरी आनन्दित तुल्याउनुहुने भगवान् वराहलाई हामी प्रणाम गर्दछौं। ब्रह्मानन्दस्वरूप, पूर्णस्वरूप, सत्स्वरूप, आनन्दस्वरूप, कैवल्यस्वरूप र चिदानन्दस्वरूप वराहलाई नमस्कार गर्दछौं। जसको दर्शन गर्नाले मात्रै मानिसहरूले मुक्ति पाउँछन्, सधैं सन्तुष्टि पाउँछन्, त्यस्ता हजुरलाई नमस्कार छ ॥१८–२२॥

कार्तिक स्वामीले भन्नुभयो – यसरी वराह भगवान्लाई देवताहरूले बारम्बार दण्डवत् प्रणाम गरे। त्यसपछि ब्रह्माजीले स्वर्गको सम्पूर्ण वृत्तान्त निवेदन गर्नुभयो ॥२३॥

---

७. चक्राक्षाङ्कितशोभिने। सूर्याभाधुग्वराहाय, इति न.सं.पु.पाठः।
८. यनताः स्म चरणं तव, इति न.सं.पु.पाठः।
९. यच्चैतन्यदृढा विद्या निवर्त्यानन्दकारिणे, इति न.सं.पु.पाठः।
१०. प्राप्नुयुर्नृपाः, इति न.सं.पु.पाठः।

ब्रह्मोवाच

भगवँस्त्वां विना शश्वत् क्लिश्यामहे[११] त्रिविष्टपे। विविधोऽपद्रवैर्देव वृषभं तं[१२] विनेव गौः ॥२४॥

यातुमर्हसि तातेश चोर्ध्वलोकेऽद्यतो हि नः। नैव त्याज्योऽस्ति स लोकः गत्वा शीघ्रं[१३] पुनीहि तत् ॥२५॥

स्कन्द उवाच

निशम्य वचनं विष्णुः सुरवक्त्रस्तवात्मकम्[१४]। देवान् प्रति स[१५] तुष्टात्मा पञ्चदेहमदर्शयत् ॥२६॥

प्रत्यादिशत् सुरान्विष्णुर्वराहरूपधृङ् मुने। तत्स्तुतिभक्तिहर्षात्मा शङ्खचक्रोद्यतो विभुः ॥२७॥

वराह उवाच

नाऽहं व्रजेऽमरा नाकं त्यक्त्वैतन्मत्प्रियं गिरिम्। नो लोकाधिकृतस्थानं सत्यं सत्यं वदाम्यहम् ॥२८॥

ब्रह्मन् प्राक्त्वत्कृतः शैलो धरण्युद्धरणाय च। पश्य चैतां तनुं त्वं हि[१६] धरणीधरनामकम् ॥२९॥

पूर्वमवततारोऽहमादिवराहसंज्ञितः[१७]। रुद्राराधनसम्भूतमिमं देहं विलोकय[१८] ॥३०॥

शुक्लोऽहं[१९] धर्मरूपोऽहं लोकसंस्थापनाय च। अवतारमिमं पश्य[२०] लक्ष्मीं शक्तिमिमां पुरः ॥३१॥

शैलकोषात् निस्सृतोऽहं[२१] कोषो नाम ममाऽमराः। हिरण्याक्षार्दकं ब्रह्मन्प्रपश्यैतत्कलेवरम् ॥३२॥

---

ब्रह्माले भन्नुभयो – हे भगवन्! साँढे नहुँदा गाईले दुःख पाए जस्तै हजुर नहुँदा हामीले स्वर्गमा दुःख पाइरहेका छौं। हजुर नहुँदा स्वर्गमा विभिन्न उपद्रवहरू आइलागेका छन्। त्यसैले हे भगवन्! आजदेखि नै हजुरले हामीलाई नछोड्नुहोस्, स्वर्गमा हिँड्नुहोस् र त्यहाँ गएर स्वर्गलाई पवित्र तुल्याउनुहोस् ॥२४-२५॥

कार्तिक स्वामीले भन्नुभयो – देवताको मुखबाट निस्किएको यस्तो स्तुति सुनेर अत्यन्त खुसी हुँदै भगवान् विष्णुले उनीहरूलाई पाञ्चभौतिक शरीरको माध्यमबाट आफ्नो दर्शन दिनुभयो। हे अगस्त्य मुनि! हातमा शङ्ख-चक्र धारण गर्नुभएका वराहरूपधारी भगवान् विष्णुले देवताहरूको स्तुति र भक्तिद्वारा प्रसन्न भएर उनीहरूलाई भन्नुभयो ॥२६-२७॥

भगवान् वराहले भन्नुभयो – हे देवता हो! यस पर्वतलाई छोडेर म स्वर्गमा जान्न किनकि कुनै पनि प्राणी नभएको यो पर्वत मलाई मन परेको छ। म सत्य कुरा भन्छु। हे ब्रह्मा! यो पर्वत अघि तपाईंले पृथ्वीको धारण गर्न बनाउनुभएको हो। पृथ्वीलाई धारण गर्ने मेरो धरणीधर नाम गरेको यो शरीर हेर्नुहोस्। आदिवराह नाम लिएर मैले पहिले अवतार धारण गरेको हुँ। रुद्रको आराधनाबाट उत्पन्न मेरो यो शरीर हेर। म स्वच्छ सेतो वर्णको छु। लोककल्याणका लागि धर्मरूप लिएर आएको यो मेरो अवतार हेर्नुहोस्। मेरो अगाडि बसेकी यी शक्ति लक्ष्मी हुन्। हे देवता हो! पर्वतको कोखबाट निस्किएको हुँदा मेरो नाम कोष रहेको हो। हिरण्याक्षलाई मार्ने मेरो यो शरीर हेर ॥२८-३२॥

---

११. क्लिश्यमहे, इति न.सं.पु.पाठः।
१२. अनड्वाहम्, इति न.सं.पु.पाठः।
१३. त्याज्यञ्च नो लोकमभिव्रजन्, इति न.सं.पु.पाठः।
१४. सुरवक्त्रेरितं स्तवम्, इति न.सं.पु.पाठः।
१५. देवान् स्वं खलु, इति न.सं.पु.पाठः।
१६. पश्यतैतत्तनुं यूयम्, इति न.सं.पु.पाठः।
१७. मीरितम्, इति न.सं.पु.पाठः।
१८. प्रयश्यत, इति न.सं.पु.पाठः।
१९. शुक्लोऽयम्, इति न.सं.पु.पाठः।
२०. पश्यतावतारमिमम्, इति न.सं.पु.पाठः।
२१. कोषाद्विनिःसृतः शैलात्, इति न.सं.पु.पाठः।

येन पूर्वं वरो दत्तो मह्यञ्च[२२] वाञ्छितं परम्। तदाद्यं पश्य मे रूपं समाराध्यं शिवं तथा[२३] ॥३३॥
वाराहीसंश्रितं स्थानं मच्छैलकिंशुकैः शिवम्। ममाऽपि वन्दनञ्चाऽस्तु तस्यै प्रणमताऽमराः ॥३४॥
गौरीस्वेदोद्भवां पुण्यां महादुष्कृतनाशिनीम्। सम्भूय सप्तभिर्वाहामादिगङ्गां प्रपश्यत ॥३५॥
यस्या दर्शनमात्रेण भूरिपापैः प्रमुच्यते। यदम्भःस्पर्शनात्कश्चिदाजन्मार्ज्जितकिल्विषैः ॥३६॥
स्नानात्परत्रजैनोभिर्विमुक्तो मानवोऽमराः। शताश्वमेधजं प्राप्य फलं स्वर्गं[२४] गमिष्यति ॥३७॥
सङ्गमेऽस्याश्च मत्तीर्थं कोकोदकादिगङ्गयोः। भविष्यति न सन्देहः स्नानात् शक्रो भविष्यति ॥३८॥
आदिगङ्गासमं तीर्थं नास्ति ब्रह्मन् रसातले। सप्तधाराश्चता[२५] गङ्गाः कौशिक्य इति शंसिताः ॥३९॥
स्नानेन[२६] यत्र कुत्रापि चाऽऽदिगङ्गोदके शिवे। वाजपेयाश्वमेधानां फलं विन्दन्ति मानवाः ॥४०॥
त्रिवारं स्नाति यो भाग्यान्मत्तीर्थे भुक्तिभाग्यदि। मां पश्यत्याऽशु जन्मानि विहाय मत्प्रतीकधृक् ॥४१॥
स्नात्वा मदीये तीर्थे यो मद्गिरिं लङ्घयिष्यति[२७]। पदे पदेऽश्वमेधानां लप्स्यते मानवः फलम् ॥४२॥
कार्त्तिक्यां पूर्णिमायां[२८] यो मकरगे रवौ तथा।माघस्य पूर्णिमायाञ्चसंस्नानि तत्फलं शृणु ॥४३॥
वाजपेयाश्वमेधानां लप्स्यते मानवः फलम्[२९]। इहलोके सुखं भुक्त्वा गमिष्यति ततः परम् ॥४४॥
कोटिकल्पं सुखी स्वर्गे ततो राजा भविष्यति। हव्यकव्यार्चनासक्तः सर्वपापैर्विवर्जितः ॥४५॥
करिष्यति यदि श्राद्धं मत्तीर्थे चाऽक्षयं भवेत्। कुलकोटिं समुद्धृत्य तुष्टो याति परां गतिम् ॥४६॥

---

पहिले मलाई जसले इच्छा लागेको उत्तम वर दिनुभएको थियो र जसको मैले आराधना गरेको थिएँ, त्यस्ता शङ्करको स्वरूप हेर। मेरो पर्वतका वृक्षका पालुवाहरूले युक्त भएको वाराही बसेको यो स्थान कल्याणमय छ। मेरो पनि तिनलाई नमस्कार छ। हे देवता हो ! तिमीहरू पनि उहाँलाई नमस्कार गर। पार्वतीको पसिनाबाट उत्पन्न भएकी, पवित्र तथा ठूला-ठूला दुराचारीहरूलाई नाश गर्ने, सात धारामा बगेकी यी आदिगङ्गा कौशिकीलाई हेर। जसलाई देख्यो मात्रै भने पनि अनेकौं पापबाट मुक्ति मिल्छ। कसैले यो जल स्पर्श मात्र गऱ्यो भने पनि जन्मभर गरेका पापबाट मुक्ति पाउँछ। हे देवता हो ! यस तीर्थमा स्नान गर्नाले मानव अन्य जन्ममा गरेका पापबाट मुक्त भई सय अश्वमेध यज्ञ गरेको फल प्राप्त गरेर मेरो लोकमा जान्छ। कोषोदका र आदिगङ्गा कौशिकीको सङ्गममा मेरो तीर्थ छ। त्यहाँ स्नान गर्ने मानिस दोस्रो जन्ममा इन्द्र हुन्छ, यसमा कुनै संशय छैन ॥३३-३८॥

हे ब्रह्मा ! यस पृथ्वीमा आदिगङ्गाजस्तो उत्तमतीर्थ छैन। यसका सातवटा धारा छन् र यसलाई कौशिकी भनिन्छ। मानिसहरूले कल्याणप्रद आदिगङ्गाको जलमा जुनसुकै ठाउँमा स्नान गरे पनि वाजपेय यज्ञ तथा अश्वमेध यज्ञ गरेको फल प्राप्त गर्दछन्। यदि कसैले मेरो तीर्थमा गएरतीन पटक स्नान गर्छ अथवा मेरो दर्शन गर्छ, त्यो मरेपछि जन्महरू (पुनर्जन्मको अवस्था) लाई छोडेर मेरै प्रतीकलाई धारण गर्न पुग्छ ॥३९-४१॥

जुन मानिसले मेरो तीर्थमा स्नान गरेर मेरो पर्वतमा आरोहण गर्दछ, त्यस मानिसले पाइलैपिच्छे अश्वमेध यज्ञ गरेको फल प्राप्त गर्दछ। कार्तिक शुक्लपूर्णिमा, मकर सङ्क्रान्ति र माघ शुक्लपूर्णिमाका दिन मेरो तीर्थमा स्नान गर्ने व्यक्तिले पाउने फल बताउँछु, सुन। ती पर्वहरूमा मेरो तीर्थमा स्नानादि गर्ने मानिसले वाजपेय र अश्वमेध यज्ञ गरेको फल पाउँछ। त्यो व्यक्तियस लोकमा सुखभोग गरेर परलोक जान्छ। त्यो व्यक्ति देवता र पितृको पूजामा तल्लीन भएर सम्पूर्ण पापबाट मुक्त हुँदै स्वर्गमा करोडौं कल्पसम्म सुखी हुन्छ र त्यसपछि राजा हुन्छ। जसले मेरो तीर्थमा श्राद्ध गर्दछ, त्यो श्राद्धादि कर्म अक्षय हुन्छ। त्यसले करोडौं कुलको उद्धार गरेर प्रसन्नतापूर्वक परमगति प्राप्त गर्दछ ॥४२-४६॥

---

२२. पूर्वं वरं दत्तम्, इति न.सं.पु.पाठः।
२३. स्वरूपं पश्यताद्यं तमाराधितञ्च शङ्करम्, इति न.सं.पु.पाठः।
२४. मम लोकम्, इति न.सं.पु.पाठः।
२५. सप्तधारायुता, इति न.सं.पु.पाठः।
२६. स्नायते, इति न.सं.पु.पाठः।
२७. मत्तीर्थे मद्गिरिं स्नात्वा चारोहणं करिष्यति, इति न.सं.पु.पाठः।
२८. कार्त्तिकीपूर्णिमायां यो मकरस्थेच संक्रमे।
तत्पूर्णेन्दौ च मत्तीर्थे स्नातकस्य फलं शृणु, इति न.सं.पु.पाठः।
२९. फलं लप्स्यति मानवः, इति न.सं.पु.पाठः।

आप्लाव्य यो हि कौशिक्यां गौरीशैलं प्रपश्यति। इह लोकार्ज्जितैः पापैः स मुक्तो नात्र संशयः ॥४७॥
प्रणमति ततः स्नात्वा गौरीशैलं शिवाञ्च माम्। शताश्वमेधजं प्राप्य सुखी याति परां गतिम् ॥४८॥
स्नात्वा पश्यति मां विष्णुमिहामुत्रजकिल्वषैः। विमुक्तो भुक्तिभाक्सद्यो मम लोकं गमिष्यति ॥४९॥
यो मामर्चति पूजाभिरपि भक्तिविवर्जितः। मच्चिह्नैर्लाञ्छयित्वा तमुद्धरिष्ये सविग्रहम् ॥५०॥
स्नाति यो ब्रह्मकुण्डे च ब्रह्मलोकं[३०] गमिष्यति। सर्वयोन्युद्भवैः पापैर्विमुक्तो नात्र संशयः ॥५१॥
हव्यकव्यार्चनं सर्वमक्षयञ्च भविष्यति। ब्रह्मन्नेतद्ध्रदे सत्यं कोटिकोटिगुणं फलम् ॥५२॥
स्नात्वा यस्त्वत्कृते कुण्डे पश्यत्यज शिवञ्च माम्। मोचयन् गर्भवासं तमुद्धरिष्ये सविग्रहम् ॥५३॥
ये ये पश्यन्ति मां लोकाः स्नानदानार्चनैरपि। वर्जिताः पामरा विप्रा उद्धरिष्ये जनांश्च तान् ॥५४॥
मद्दर्शनञ्च लोकानां दुर्लभञ्च भविष्यति। कलौ प्राप्ते विधास्यन्ति म्लेच्छास्तीर्थविमर्दनम् ॥५५॥
उषित्वा पञ्चरात्रं ये मत्प्रियेऽद्रौ सकृन्नराः। वराह इति वक्ष्यन्ते उद्धरिष्ये च तानहम् ॥५६॥
ये मां पर्वसु पश्यन्ति ह्युषित्वा प्लावका इह। कौशिक्यां मद्वपुर्भाजो भविष्यन्ति दिवौकसः ॥५७॥
कलौ प्राप्ते भविष्यामि म्लेच्छगणार्दनद्रवः। न त्यक्ष्यामि तथाप्येनं मत्प्रियमचलं विधे ॥५८॥

स्कन्द उवाच

एवमाकर्ण्य धाताऽसौ वराहरूपिणो वचः। मुमुदिरे विश्वस्रष्टा[३१] मुनयो देवयोनयः ॥५९॥
विष्णुं प्रत्यर्च्य धाताऽशु सुरेभ्यश्चाऽब्रवीदिति। अत्राद्यावतरिष्यामः कोलरूपेण निर्जराः ॥६०॥

---

जसले कोशी नदीमा स्नान गरेर गौरीपर्वतको दर्शन गर्छ, त्यो व्यक्ति यस संसारको पापबाट मुक्त हुन्छ, यसमा कुनै सन्देह छैन। जसले स्नान गरेर गौरीपर्वतमा रहेकी पार्वती र मलाई नमस्कार गर्छ, त्यसले सय अश्वमेध यज्ञ गरेको फल प्राप्त गर्दछ। त्यो व्यक्ति सुखी भई परमगतिमा पुग्छ। जसले स्नानपूर्वक मेरो दर्शन गर्दछ, त्यो यस लोक र परलोकमा गरेर पापबाट मुक्त भएर मोक्षको अधिकारी बन्दछ र तत्काल मेरो लोकमा प्राप्त हुन्छ। भक्ति नभएको व्यक्तिले पनि यदि मलाई पूजा गर्दछ भने म त्यसलाई मेरै चिह्नहरूद्वारा चिह्नित गराएर सशरीर उसको उद्धार गर्नेछु। जसले ब्रह्मकुण्डमा स्नान गर्छ, त्यो व्यक्ति हजुर(ब्रह्मा)को लोकमा जान्छ। सम्पूर्ण योनिमा गरेका पापबाट ऊ मुक्त हुन्छ, यसमा सन्देह छैन। हे ब्रह्माजी ! यस तलाउको किनारमा जसले देवतालाई हवन र पितृलाई दान गर्छ त्यो सबै अक्षय हुन्छ। त्यसले करोडौं गुणा बढी फल प्राप्त गर्दछ, यो सत्य कुरा हो ॥४७-५१॥

हे ब्रह्माजी ! जसले तपाईंले निर्माण गरेको यस कुण्डमा स्नान गरेर मेरो तथा शिवजीको दर्शन गर्दछ, म गर्भवासबाट मुक्त बनाएर सशरीर त्यसको उद्धार गर्नेछु। स्नान, ज्ञान र पूजनबाट वर्जित भएका फटाहा ब्राह्मणहरूले मेरो दर्शन गरे भने म तिनीहरूको पनि उद्धार गर्नेछु। हे ब्रह्माजी ! कलियुग आएपछि म्लेच्छहरूले यस ठाउँको विनाश गर्ने छन्। त्यसपछि मानिसहरूले मेरो दर्शन गर्न सक्दैनन्। जुन मानिसहरूले पाँच रातसम्म मेरो प्रिय यस पर्वतमा बसेर एक पटक मात्रै भए पनि वराह भन्ने शब्द उच्चारण गर्नेछन्, पर्वमा बसेर यहाँ स्नान गर्नेछन्, म तिनीहरूको उद्धार गर्नेछु। हे देवताहरू ! पर्वहरूमा यहाँ आई जुन मानिसहरूले रातभर बसेर मेरो दर्शन गर्नेछन् र प्रातःकालमा कोशी नदीमा स्नान गर्नेछन्, तिनीहरूले मेरै रूप ग्रहण गर्दछन्। हे ब्रह्माजी ! कलियुग लागेपछि जब म म्लेच्छहरूलाई नाश गर्न थाल्नेछु, त्यसपछि सारा देवताहरू कौशिकी नदीमा मेरै स्वरूप लिएर आउनेछन्। त्यसैले मेरो यस पर्वतलाई म छाड्न सक्दिन ॥५२-५८॥

कार्तिक स्वामीले भन्नुभयो - वराहरूपधारी भगवान्‌को यी वचन सुनेर ब्रह्मा, देवता, ऋषिहरू र देवयोनिहरू अत्यन्त प्रसन्न भए। ब्रह्माजीले वराहरूपधारी भगवान् विष्णुको पूजा गरेपछि देवताहरूलाई सम्बोधन गर्दै भन्नुभयो - हे देवताहरू ! आज म वराहकै रूपमा अवतार धारण गर्नेछु ॥५९-६०॥

---

३०. स्नायते ब्रह्मकुण्डे यस्तव लोकम्, इति न.सं.पु.पाठः। ३१. मुमुदे विश्वसृग्देवा, इति न.सं.पु.पाठः।
३१क. विधातोऽत्र म्लेच्छनाञ्च विमर्दनात, इति न. सं.पु.पाठः।

इत्युक्त्वा द्रुहिणो देवान्कौशिक्यां स्नापयन्मुनीन्। अवततार तच्छैले कोलरूपेण कुम्भजः ॥६१॥
अवतीर्य[३२] सुरास्तत्र शक्रादयो मुदान्विताः। कोलरूपेण तच्चिह्नैर्विष्णुं प्रसेविरे ततः ॥६२॥
कौशिक्यां मुनयः स्नात्वा रविर्दिक्पतयो विधुः। गिरिं क्रान्त्वा नमन्तः श्रीविष्णुं रवौ माघगते ह्रदे[३२क] ॥६३॥
ददर्श तद्ध्रदे शक्रः स्नात्वाऽर्चयन् वराहकम्[३३]। युवतिं सुन्दरीं गेहं प्रत्यायान्तीं गणावृताम् ॥६४॥
मुमोह द्युपतिस्तत्र सुन्दरीं प्रेक्ष्य तां भृशम्। इन्द्रं तादृशमालोक्य पप्रच्छ नारदो वचः ॥६५॥

नारद उवाच

किमर्थमद्य सुत्रामन् मूर्च्छया त्वं च मूर्च्छितः। तद्वार्त्तां वद नो देव प्रतीकारो भविष्यति ॥६६॥

इन्द्र उवाच

काऽसौ वराङ्गना देवी हृत्वा गच्छति मन्मनः[३४]। विमानेनाऽम्बरेणाऽशु स्नाता हरिं प्रवन्दिनी ॥६७॥
तद्रूपपीयूषनिपानशान्तः प्रोन्मत्तनेत्रभ्रमराकुलाङ्गः।
तद्देहसंस्पर्शनकौतुकाप्तः प्रोन्मत्तकर्मेन्द्रियचित्तवर्गः ॥६८॥

नारद उवाच

हिमवदात्मजः कोकस्तस्य पुत्रीं विदुर्हि ताम् ॥६९॥
कोकानाम्नीं वरारोहां स्वर्णकूटप्रियां वृषन्[३५]। सा गच्छति पितुर्गेहं पितरौ नमितुं मुदा ॥७०॥
प्रियालयं विहायाद्य परिवारैः समायुता।

स्कन्द उवाच

निशम्य वचनं शक्रो मुनिवक्त्रेरितं द्रुतम् ॥७१॥
यत्रैकान्ते ययौ कोका तया समागमोत्सुकः। कतिचिदन्वगच्छत्स व्याचष्ट निर्ज्जने पथि ॥७२॥

---

ब्रह्माजीले देवताहरूसँग यसरी कुरा गरेपछि देवता र ऋषिहरूलाई कोशीमा स्नान गर्न लगाएर आफूले बँदेलको रूप लिएर प्रकट हुनुभयो। त्यसपछि इन्द्र आदि देवताहरू पनि सहर्ष बँदेलको रूपमा परिणत भए। उनीहरूले उहाँका चिह्न धारण गरी भगवान् वराहको सेवामा तत्पर भए। मकर राशिमा सूर्य रहेको बेला ऋषिहरू, सूर्य, दिक्पाल र चन्द्रमाले पनि यस तलाउमा स्नान गरेर पर्वतमा चढी विष्णुलाई नमस्कार गरे। त्यस तलाउमा स्नान गरेर वराह भगवान्‌को पूजा गर्न लागेको समयमा इन्द्रले गणहरूका साथ घरतिर आउन लागेकी सुन्दरी युवतीलाई देखे। त्यस्ती सुन्दरीलाई देखेर इन्द्र अत्यन्त मोहित भए। त्यसरी मोहित भएका इन्द्रलाई देखेर नारदले सोधे ॥६१-६५॥

नारदले भने - हे इन्द्र ! तपाईं किन मूर्च्छा पर्नुभयो ? त्यो कुरा बताउनुहोस्। त्यसको प्रतीकार हुनेछ ॥६६॥

इन्द्रले भने - सुन्दर विमानबाट छियेछियेे ओर्लिएर स्नान गरी हरिको वन्दना गरेर मेरो हृदय हरण गरेर जाने ती सुन्दरी को हुन् ?। तिनको सौन्दर्यरूप शीतल अमृतपानका लागि मेरो नेत्ररूपी भ्रमर आज लालायित भएको छ। तिनको देश (शरीर) को स्पर्श गर्ने चाहनाले मेरा कर्मेन्द्रिय र चित्त उन्मत्त बनेका छन् ॥६७-६८॥

नारदले भने - हे इन्द्र ! हिमालयको छोराको नाम कोक हो। यी सुन्दरी तिनै कोककी छोरी हुन् भन्ने जान्नुहोस्। उनी आफ्नो प्रियतमको घरबाट नोकर-चाकरसहित भएर आफ्ना आमा-बाबुलाई भेट्न माइत जान लागेकी छिन् ॥६९-७०½॥

कार्तिक स्वामीले भन्नुभयो - नारदजीको मुखबाट यस्तो कुरा सुनेर युवतीसित समागम गर्ने इच्छाले इन्द्र एकान्तस्थलमा गए। इन्द्र केही समयसम्म पछि लागेर गए, एकान्त बाटोमा पुगेपछि उनले उनले कोकासित कुरा गर्न थाले ॥७१-७२॥

---

३२. अवतर्त्तुम्, इति न.सं.पु.पाठः।
३२क. गिरिं क्रमन् नमन् विष्णुं मकरस्थे रवौ ह्रदे
३३. स्नात्वा वराहमर्च्चयन्, इति न.सं.पु.पाठः।
३४. मत्स्वान्तं हृत्य गच्छति, इति न.सं.पु.पाठः।
३५. प्रियां वृषा, इति न.सं.पु.पाठः।

कोके सुन्दरि देवीति निवर्त्तय क्षणं गतिम्। इत्याकर्ण्य वचः कोका निवर्त्य तं वरेक्षणम् ॥७३॥
यावल्लक्ष्यं समायातं कोऽयं कोऽयं समध्वनत्[३६]। तावद्ययौ मुने जिष्णुस्तस्याऽन्तिकञ्च साम्प्रतम् ॥७४॥
सखीपरिजनं सर्वं तन्मायया विमोहयन्। तर्प्यतां सौरतं सौख्यं मम चित्तसुखप्रिये ॥७५॥
ब्रुवन्नेवं वृषा तस्यामाश्रितु[३७]मुत्सुकोऽभवत्। साऽपि मोहवती[३८] तत्र कामार्त्ताऽधो मुखी ह्रिया ॥७६॥
प्रेक्ष्य शक्रमियेषाशु सुरतिमब्रवीत्तदा।

कोकोवाच

स्वागतं ते प्रियाद्यात्र पप्रच्छ सुरतिञ्च मे ॥७७॥
त्वद्रूपाशुगविद्धाऽहं मन्मथेन[३९] जडाङ्गिनी। शून्याश्रमो रहस्यस्ति[४०] पश्यताञ्च मनोहरः ॥७८॥
मयाऽत्र[४१] काम्यते कामो भवता सह साम्प्रतम्।

शक्र उवाच

महर्षेराश्रमो ह्येष नाऽत्र क्रीडावः सुन्दरि![४२] ॥७९॥
शपिष्यति रुषाऽऽविष्टो महर्षिर्नो न संशयः। तत्र कङ्कगुहायाञ्च गच्छ देव्यग्रतः खलु ॥८०॥
तस्यां रहसि तत्काममावां सङ्क्रीडयावहे।

कोकोवाच

अतिज्यायान्मुनिश्चाऽसौ इन्द्रियशक्तिवर्जितः[४३] ॥८१॥
किङ्करिष्यति नः कुत्सां दुर्बलो हीनलोचनः। अत्रैव कामये कामं प्राणप्रिय! यथासुखम् ॥८२॥
गमिष्यामि न चाऽन्यत्र ह्यस्मादुपवनाद् बहिः।

---

इन्द्रले भने – हे कोका! हे सुन्दरी! हे देवी! एकछिन पर्ख। इन्द्रको यस्तो कुरा सुनेर कोकाले पर्खँदै इन्द्रलाई नजिक नआउञ्जेल यो को हो? को हो? भनेर सोधिन्। हे अगस्त्य मुनि! उनका साथी र सेवकहरू सबैलाई मायाले मोहित तुल्याएर इन्द्र तुरुन्त कोकाको नजिकै आए। मेरो चित्तलाई आनन्द दिने हे प्रिये! मलाई सम्भोगको आनन्द देऊ।, इति भन्दै इन्द्रले कोकासित बस्ने उत्कट अभिलाषा प्रकट गरे। कामासक्त भएर मोहमा परेकी कोकाले इन्द्रलाई देखेर लजाउँदै रतिको इच्छा प्रकट गरिन् ॥७३–७४॥

कोकाले भनिन्– मसँग सम्भोगको बारेमा सोध्ने तपाईंलाई स्वागत छ। तपाईंको रूपसौन्दर्य देख्नेबित्तिकै म कामवासनाले उन्मत्त र जड भएकी छु। हे इन्द्र! हेर्नुहोस्, यो सुन्दर आश्रम शून्य र एकान्त पनि छ। यसै ठाउँमा तपाईंसित यथेष्ट कामवासनाको रहर मेटउने मलाई इच्छा छ ॥७५–७८½॥

इन्द्रले भने – हे प्रिये! यो ठूलो ऋषिको आश्रम हो। यहाँ रतिक्रीडा गर्नुहुँदैन। त्यसो गरेमा ऋषिले रिसाएर सराप दिनेछन्। यसमा शङ्का छैन। हे प्रिया! यहाँ कुनै देवीको मन्दिरदेखि उत्तरपट्टि एउटा निर्जन एकान्तमा कङ्कनामक गुफा छ, हामी त्यही गुफामा गएर क्रीडा गरौं ॥७९–८०½॥

कोकाले भनिन्– हे इन्द्र! साह्रै बूढा, सबै इन्द्रियहरू विकल भइसकेका, दुर्बल, आँखा नदेख्ने यी ऋषिले हाम्रो क्रीडालाई कसरी देख्छन् र? के गर्न सक्छन् र?। हे इन्द्र! म त यो रमणीय उपवनदेखि बाहिर जान्न। हे प्राणप्रिय! म यस ठाउँमा नै रमण गर्न चाहन्छु ॥८१–८२½॥

---

३६. कोऽसौ कोसाविति ब्रुवन्, इति न.सं.पु.पाठः।
३७. तस्यै आश्रितुम्, इति न.सं.पु.पाठः।
३८. मुग्धवती, इति न.सं.पु.पाठः।
३९. विद्धोऽहं मन्मथोन्मत्त, इति न.सं.पु.पाठः।
४०. शून्याश्रमं रहश्चास्ति, इति न.सं.पु.पाठः।
४१. अत्रैव काम्यते कामम्, इति न.सं.पु.पाठः।
४२. नैवात्र क्रीडयावहे, इति न.सं.पु.पाठः।
४३. सर्वेन्द्रियैर्विवर्जितः, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

कामार्त्ता शक्रमित्युक्त्वा गृहीत्वा[४४] तत्करं ध्रुवम् ॥८३॥
अविशत्पुष्पशय्यायामृष्याश्रमान्तिके कुशे। कुशकार्य्यं समुत्सृज्य चोदतिष्ठन्मुनिर्द्रुतम् ॥८४॥
आकर्ण्य तद्वचस्तत्र कृतस्नानः क्रुधाकुलः[४५]। शप्तुञ्च सहसा कोकां रक्तनेत्रो[४६] मुनिर्मुने ॥८५॥
इत्याचष्ट वचोऽरण्ये गोपयन् विग्रहं निजम्[४७]।

ऋषिरुवाच

अवजानासि मां यस्मादसति भर्तृवञ्चके ॥८६॥
व्यभिचारापराधेऽत्र स्वकृतं भुङ्क्ष्व चाऽद्यतः। परप्रियेण सार्द्धं या क्रीडति कामलालसा[४८] ॥८७॥
सा पतिष्यति सङ्कष्टे[४९] गुरुविप्रविलङ्घनात्। सन्ध्योपासनपूतं तमनादृत्य जलाशयम् ॥८८॥
त्वञ्चाऽसति ततश्चाऽत्र तरङ्गिणी भवाऽनिशम्।

स्कन्द उवाच

शापोद्यतं मुनिं प्रेक्ष्य प्रणनाम मुहुर्वृषा ॥८९॥
कोकां त्यक्त्वाऽशु[५०] दुद्राव स्थानान्तरं सवेपथुः। कोका शीर्णाऽभवत्तत्र तोये च लवणं यथा ॥९०॥
भूत्वा तरङ्गिणी शापात्स्वच्छाम्बुना उवाह[५१] सा। नदीभूतां मुनिः कोकां प्रेक्ष्य दयापरोऽभवत् ॥९१॥
पवित्रा भव कल्याणीत्याशिषं स ददौ पुनः। देवर्षयो मुदा सस्नुः कोकातोयेषु सन्ततम् ॥९२॥
ततः पूताऽभवन्नित्यं कौशिकीसङ्गमात्पुनः।
शृण्वन्ति धीराः सततं महत्त्वं[५२] वराहरूपस्य गिरेश्च नद्योः।
सन्दर्शनाद् पुण्यफलञ्च यत्र[५३] स्नानेन स्थित्या सततं लभन्ते[५४] ॥९३॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे वराहमाहात्म्यं नाम पञ्चत्रिंशोऽध्यायः ॥३५॥

कार्तिक स्वामीले भन्नुभयो – कामासक्त भएकी त्यस सुन्दरीले यस्तो भनेपछि इन्द्रले तुरुन्त तिनको हात समाते र ऋषिको आश्रम नजिकै रहेको कुशस्थलीमा फूलको शय्या बनाएर उनीसँग क्रीडा गरे। यता स्नान गरी कुश उखेल्न लागेका ऋषीले स्नान गर्नासाथ तिनीहरूको कुरा सुनेर आफ्नो कार्य छाडी तुरुन्त उठे। त्यस जङ्गलमा तिनीहरूको रतिक्रीडा देखेर रिसाएका ती मुनिले शरीरै नदेखाई कोकालाई तुरुन्त सराप दिन थाले ॥८३–८५½॥

ऋषिले भने – हे असती ! हे अतिवेश्या ! पतिलाई वञ्चन गर्ने हे नारी ! यहाँ मलाई तैँले अपमान गरिस्। यस ठाउँमा गरेको व्यभिचारको फल तैँले आजदेखि भोग्नुपरोस्। जुन नारीले कामवासनावश परपुरुषका साथ मैथुन गर्छे र गुरु-ब्राह्मणको अपहेलना गर्दछे, त्यो ठूलो कष्टमा पर्दछे। सन्ध्योपासनाले पवित्र भएको यस जलाशय तथा मेरो समेत अपमान गर्ने तँ वेश्या यसै स्थानमा सधैँ बगिरहने नदी भएस् ॥८६–८८½॥

कार्तिक स्वामीले भन्नुभयो –सराप दिन तयार भएका मुनिलाई देखेर थर्थर काँप्दै इन्द्रले उनलाई साष्टाङ्ग दण्डवत् प्रणाम गरेर कोकालाई त्यसै ठाउँमा छोडी अन्यत्र जाने तर्खर गरे। मुनिको सरापले पानीमा नून पग्लिए झैँ गरी पग्लिएर कोका स्वच्छजलको रूपमा बग्न थालिन्। नदी भएर बग्न थालेकी कोकालाई देख्दा मुनिका हृदयमा दया जाग्यो। त्यसपछि उनले हे कल्याणी ! तिमी पवित्र होऊ भन्ने आशीर्वाद दिए। देवताहरूले कोका नदीको जलमा आएर स्नान गरे। कौशिकीको संसर्गले गर्दा ती नदी अझ पवित्र भइन् ॥८९–९२½॥

जुन मानिसले भगवान् वराह, कोका नदी, कौशिकी नदी, ब्रह्मकुण्ड र भगवती दुर्गा तथा वराहेश्वर महादेवको माहात्म्य सुन्छन्, ती मानिसहरूले जहाँ बसे पनि प्राप्त हुने सम्पूर्ण फल पाउँछन् ॥९३॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गत हिमवत्खण्डको वराहमाहात्म्य नामक पैंतीसौं अध्याय पूर्ण भयो।

४४. संगृह्य, इति न.सं.पु.पाठः। ४५. स्नानादेव कृतोद्भवम्, इति न.सं.पु.पाठः। ४६. रुषाविष्टो, इति न.सं.पु.पाठः।
४७. प्रदर्शयन्त्वविग्रहम्, इति न.सं.पु.पाठः। ४८. खलु लालसैः, इति न.सं.पु.पाठः। ४९. पतिष्यत्याशु सा कष्टे, इति न.सं.पु.पाठः।
५०. त्यज्याशु, इति न.सं.पु.पाठः। ५१. स्वच्छाम्बुः प्रववाह, इति न.सं.पु.पाठः। ५२. महात्म्यम्, इति न.सं.पु.पाठः।
५३. सत्संभवं तत्र फलञ्च गत्वा, इति न.सं.पु.पाठः। ५४. लभन्ति कुत्रापि समाश्रयन्ते, इति न.सं.पु.पाठः।

# षट्त्रिंशोऽध्यायः

भगवत्या उमायास्तपःसिद्धिः

अगस्त्य उवाच

चित्रं मे जायते स्वान्ते चेदानीञ्च षडानन। प्रसादात्ते समाकर्ण्य कौशिक्याश्च समुद्भवम् ॥१॥
देव्याः स्वेदाच्च सम्भूताः कौशिक्यः सप्त तत्कथम्। श्रोतुमिच्छाम्यहं भूयो वद मे शङ्करात्मज ॥२॥

स्कन्द उवाच

श्रुतवान् यदहं पूर्वमुमेश्वरमुखाच्च यत्। देव्या यच्चरितं वार्ता कौशिक्याश्च समुद्भवम् ॥३॥
तत्सर्वञ्च वदिष्यामि मुने शृणु यथा पुरा। पुण्यां वार्त्तामुमादेव्याः सर्वभुवनपावनीम्[1] ॥४॥
दक्षक्रुद्धा पुरा देवी सन्त्यज्य च कलेवरम्। ससर्ज पुनरात्मानं मेनायां सा घटोद्भव ॥५॥
ततो हिमालयः शैलो मुमोदाऽशु सविग्रहः। अभीप्सितां सुतां दिव्वयां दृष्ट्वा परमसुन्दरीम्[2] ॥६॥
विमुच्य स्वगलाद्धारं नानारत्नैश्च निर्मिलम्। प्रसविन्यै स मेनायै ददौ मोहाद् हिमालयः[२क] ॥७॥
ततश्चाऽऽहूय सप्तर्षीनाज्ञापयत्तदा गिरिः। संस्कुर्वन्तु सुखेनाऽऽर्याः[3] पुत्रीं मे कुलभूषणाम् ॥८॥
मम मातामहोऽगस्त्य हर्षैः पूरितमानसः। ददौ दायानि विप्रेभ्यो वासोरत्नानि हाटकम् ॥९॥
कोटिसंख्याश्च गा वित्तैर्विभूषणैर्व्यभूषयत्। कपिलाश्चैव विप्रेभ्यो ददौ वत्सतरीयुताः ॥१०॥

---

## अध्याय- ३६

भगवती उमाको तपस्या सिद्धि

अगस्त्य मुनिले भन्नुभयो – हे कार्तिक स्वामी ! हजुरको अनुकम्पाबाट कौशिकीको उत्पत्तिको महिमा सुनेर मेरो मनमा आश्चर्य लागेको छ। हे कार्तिक स्वामी ! देवीको पसिनाबाट सात कोशीहरू कसरी उत्पन्न भएका थिए ? म यो सबै सुन्न चाहन्छु। मलाई बताइदिनुहोस् ॥१-२॥

कार्तिक स्वामीले भन्नुभयो – मैले पहिले देवीको चरित्रसँग सम्बद्ध वृत्तान्त र कौशिकीको उत्पत्तिको बारेमा भगवान् शङ्करको मुखबाट सुनेको थिएँ। हे अगस्त्य मुनि ! सम्पूर्ण लोकलाई पवित्र तुल्याउने देवीको यो चरित्र जे जस्तो सुनेको थिएँ, म सबै तपाईंलाई बताउँछु ॥३-४॥

हे अगस्त्य मुनि ! अघि दक्षसँग रिसाएकी सतीदेवीले आफ्नो शरीर त्यागेरफेरि आफूलाई मेनाको गर्भबाट अवतीर्ण गराउनुभएको थियो। यसपछि हिमालय आफूले चाहेजस्ती दिव्य, सबैभन्दा सुन्दरी पुत्री प्राप्त गरेर अत्यन्त आनन्दित भए। प्रसन्न हुँदै उनले तत्काल आफ्ना गलाबाट अनेक रत्नहरू जडित दिव्य हार झिकेर सुत्केरी भएकी ती मेनालाई दिए। त्यसपछि हिमालयले सप्तर्षिहरूलाई बोलाएर भने – हे ऋषि हो ! मेरो कुलमा उत्पन्न भएकी रत्नसमान पुत्रीको जन्मसंस्कार गरिदिनुहोस् ॥५-८॥

हे अगस्त्य मुनि ! मेरा मातामह हिमालय धेरै खुसी हुनुभयो र उहाँले ब्राह्मणहरूलाई अनेक वस्त्र, रत्न र सुवर्णहरू दान दिएनुभयो। उहाँले ब्राह्मणहरूलाई अनेक अलङ्कारले अलङ्कृत दुहुना बाच्छा–बाच्छीले युक्त भएका करोडौं कैलो वर्णका गाईहरू पनि दान दिनुभयो ॥१०॥

---

१. सर्वलोकपवित्रदाम्, इति न.सं.पु.पाठः।
२. अभीप्सितात्मजां दिव्यां सर्वोन्नतसुसुन्दरीम्, इति न.सं.पु.पाठः।
२क. स मेनायै प्रसूतायै ददौ तस्यै ध्रुवं मुदा, इति न.सं.पु.पाठः।
३. संस्कारयन्तु भो चार्या, इति न.सं.पु.पाठः।

ततः सप्तर्षयोऽगस्त्य संस्कृत्य ताञ्च बालिकाम्। प्रचक्रुरभिधानं ते बालिकाया यथोचितम् ॥११॥
पर्वतस्य हिमाद्रेर्य्या प्रियापत्या सुलक्षणा। सा पार्वतीति भूयाद्वै त्रिषु लोकेषु विश्रुता ॥१२॥
इति तदभिधानञ्च कृत्वाऽशु ऋषयस्ततः। गतास्ते बद्रिकारण्यं विष्णोः स्थानं मुदाऽन्विताः ॥१३॥
प्रत्यहं क्रमशः[४] धीमन्वर्द्धमाना च पार्वती। पञ्चवर्षाऽभवत्साऽऽर्य्या त्रैलोक्याधिकसुन्दरी ॥१४॥
रेमे सा कौतुकैर्नित्यं बालुकाभिश्च कन्दुकैः। विदुषी सा गुरौ भक्तिमती देवी मनीषिणी[५] ॥१५॥
कदाचित् समये गौरी सम्मत्या शैलमेनयोः[६]। सेवमाना महादेवं तपःस्थं तत्र संस्थिता ॥१६॥
तपःस्थितेन रुद्रेण दग्धं पुष्पायुधं ततः। स्वयं ददर्श गौरी सा तेन सा कुपिता सती[७] ॥१७॥
शर्वो मुञ्जाचलं त्यक्त्वा ययौ कैलासमीश्वरः। ततोऽभवन्निराशाऽऽर्य्या हरं प्रति तदा मुने ॥१८॥
तत उमा तपः कर्त्तुं मनो दधे महामनाः। विचार्य हृदये देवो न लभ्यः तपसा विना[८] ॥१९॥
कदाचिद्दिवसे गौरी चाऽपृच्छन्मातरं निजाम्। धर्मञ्च स्वेच्छया कर्तुमुपवासं सुदुश्चरम् ॥२०॥

पार्वत्युवाच

मातरिच्छाम्यहं कर्त्तुं निरशनं परं व्रतम्। आज्ञापयाऽशु मां देवि ! यतस्तस्य फलं भवेत्[९] ॥२१॥
ईश्वरस्य पुरा दृष्टं कठोरं सुतपो मया। ममाऽपि विद्यते कामः तस्मिन् कामदुघे पुरः[१०] ॥२२॥
तपसा लभ्यते हृद्यं सुराज्यं तपसा परम्। भुक्तिमुक्तिमहैश्वर्य्यं गरीयश्च ततस्तपः ॥२३॥

---

हे अगस्त्य मुनि ! त्यसपछि सप्तर्षिहरूले ती बालिकाको संस्कार गरेर बालिकाको सुहाउँदो नामकरण गरे। सम्पूर्ण लक्षणले युक्त भएकी सर्वलक्षणले सुसम्पन्न ती हिमालय पर्वतकी पुत्रीको नाम पार्वती रह्यो। यही नामले यी तीनै लोकमा प्रसिद्ध भइन्। यस्तो नाम राखेर ऋषिहरू प्रसन्न हुँदै भगवान् विष्णुको वासस्थान बद्रिकारण्य- बदरी आश्रममा गए ॥११-१३॥

तीनै लोकका स्त्रीहरूमा सबैभन्दा सुन्दरी भएकी ती पूज्य पार्वती दिनानुदिन बढ्दै गएर पाँच वर्षकी भइन्। ती पार्वती उत्साहपूर्वकबालुवा र बल खेलेर रमाउन थालिन्। आफ्ना बाबु-आमा र गुरुजनप्रति श्रद्धालु ती पार्वती सम्पूर्ण विद्यामा निपुण विदुषी बनिन्। कुनै समयमा ती गौरी मातापिताको सल्लाहअनुसार त्यहाँ तपस्या गरिरहनुभएका महादेवको सेवा गर्न थालिन्। तपस्यामा बस्नुभएका रुद्रले देवतासँग रिसाउँदै जब कामदेवलाई भस्म गर्नुभयो, त्यो दृश्य पार्वती आफैँले देख्नुभयो र भित्रभित्रै नमिठो रिसमा पर्नुभयो ॥१४-१६॥

हे अगस्त्य मुनि ! त्यसपछि भगवान् शङ्कर मुञ्जाचल पर्वत छोडेर कैलासपर्वतमा जानुभयो। शिवजी गएपछि पूज्य पार्वती उहाँको यस कार्यबाट निराश हुनुभयो। तपस्या नगरी शिवजीलाई प्राप्त गर्न सकिन्न भन्ने सोचेर अत्यन्त बुद्धिमती ती पार्वतीले उहाँको तपस्या गर्ने विचार गर्नुभयो र कुनै दिन उहाँले आफ्नी आमासित अत्यन्त कठिन धर्म उपवास व्रत गर्ने अनुमति माग्नुभयो ॥१७-२०॥

पार्वतीले भन्नुभयो - हे माता ! म निराहार बसेर व्रत गर्न चाहन्छु, मलाई तुरुन्त आज्ञा दिनुहोस् किनभने त्यस व्रतबाट उत्तम फल प्राप्त हुन्छ। पहिले मैले महादेवले कठिन तपस्या गरेको देखेकी थिएँ। मलाई पनि आफ्नो कामना पूर्ण गरिदिने तपस्या गर्ने इच्छा छ। तपस्याबाट नै आफ्नो इच्छा पूर्ण हुनुका साथै उत्कृष्ट राज्य लाभ हुन्छ। भुक्ति-मुक्ति र ऐश्वर्य पनि तपस्याबाट नै प्राप्त हुने भएकाले तपस्या सबैभन्दा ठूलो छ ॥२१-२३॥

---

४. प्रत्यहम्, इति न.सं.पु.पाठः।
५. विद्यानां पारगा देवी मनीषी भक्तिमान् गुरौ, इति न.सं.पु.पाठः।
६. कश्चित्काले ततो गौरी पित्रोश्च सम्मतेन वै, इति न.सं.पु.पाठः।
७. आक्रोशयत्सुरांस्तदा, इति न.सं.पु.पाठः।
८. समाधायेति वै स्वान्ते न चान्यथा शिवं लभेत्, इति न.सं.पु.पाठः।
९. यतस्तेषां फलं लभेत्, इति न.सं.पु.पाठः।
१०. सर्वकामदुघावृतम्, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

श्रुत्वा मेना सुतायास्तद्वचनञ्चाऽप्रियं तदा। पञ्चवर्षवयो यस्या लेभे चित्तं भयोद्वहम् ॥२४॥
सान्त्वयामास भूयस्तां सुमधुरं मधुस्रवैः। वचोभिर्मधुरैर्मेना[११] पुत्रीं मधुरभाषणीम् ॥२५॥
उवाच वचनं मेना परिरभ्याऽशु वक्षसा। आश्चर्य्यगद्गदरवा[१२] पुत्रीं स्नेहवती च सा ॥२६॥

मेनोवाच

धर्मे तिष्ठतु मा पुत्री पञ्चवर्षं वयस्तव। सुकोमलश्च देहोऽयं क्षुत्पिपासे कथं सहेत् ॥२७॥
पाञ्चभौतिकदेहानामसह्यं दुस्तरं तपः। उपवासं व्रतं गाढं सहते तत् कथं वद ॥२८॥
यद्धर्मस्थितये तप्तमीश्वरेण तपो महत्। तत्तापं सहते तस्य देहः सत्यमयोनिजः[१३] ॥२९॥

उमोवाच

मातरेवं न वक्तव्यं कटुकं वचनं हि मे। ये प्रस्थिताः सुधर्मेषु नाऽपेक्षन्ते कलेवरम् ॥३०॥
पाञ्चभौतिकदेहानां यातनायै च तत्तपः[१४]। विषयासक्तिनाशाय[१५] शिवस्थानां शुभाय च ॥३१॥
व्रतधर्मनिषेधादिकदाचारभृतां पुनः। धर्मे पराङ्मुखानां हि नरकं प्रोक्तमक्षयम् ॥३२॥
तपोधर्मेषु निष्ठानां शरीरमचलं भवेत्। यः सेव्यते तपोभिर्वै स च वश्यो भवेद् ध्रुवम्[१६] ॥३३॥
स्वान्तं वाञ्छति मे[१७] मातः सेवितुं हरपादुकाम्। मृत्युञ्जयोऽपि मह्यं हि मद्वाञ्छां दास्यति ध्रुवम् ॥३४॥

---

कार्तिक स्वामीले भन्नुभयो – पाँच वर्षकी आफ्नी छोरीको यस्तो अप्रिय कुरा सुनेर मेना आश्चर्य मान्दै केही डराइन्। त्यसपछि मेनाले अत्यन्त मीठो बोल्ने आफ्नी प्यारी छोरीलाई महजस्तो मधुर वचनद्वारा धेरै सम्झाइन्। पुत्रीको स्नेहमा डुबेकी ती मेनाले आफ्नी छोरीलाई छातीले तुरुन्त अङ्कमाल गरेर प्रेमले गद्गद हुँदै मीठो बोलीले भनिन् ॥२४-२६॥

मेनाले भनिन्- हे छोरी ! अहिले तिमी धर्म गर्न सक्दिनौ, व्रत नबस, तिम्रो उमेर भर्खर पाँच वर्ष भएको छ। कोमल शरीरले भोक र प्यास कसरी सहन सक्छ र ? यो पाञ्चभौतिक शरीरका लागि तपस्या अत्यन्तै कठिन हुन्छ। त्यसमा पनि कठोर उपवास व्रत गरेर त्यसलाई शरीरले कसरी सहन सक्छ ? मलाई भन। जुन ईश्वरैले बाँधिदिएको तपश्चर्या वा धर्मको स्थिति छ, त्यसको दुःख योनिबाट उत्पन्न नभएको व्यक्तिले नै सहन गर्न सक्छ ॥२७-२९॥

उमाले भन्नुभयो – हे आमा ! यस्तो अप्रिय कुरा नभन्नुहोस्। जो धर्ममा लागेका छन्, तिनीहरूलाई शरीरको वास्ता हुँदैन। मात्र पाञ्चभौतिक शरीरलाई नाश गर्नका लागि नै विषयमा आसक्तिरहित मानिसहरूको कल्याणका लागि तपस्या एवं व्रतको महत्त्व रहेको छ ॥३०-३१॥

व्रत तथा धर्मको निषेध गर्ने, नराम्रो आचरण लिने र धर्मबाट पराङ्मुख भएका मानिसहरूलाई नै ठूला-ठूला अक्षय नरकहरूको व्यवस्था छ, भनेर भनिन्छ। तपस्या र धर्ममा लागेका मानिसहरूको शरीर स्थिर हुन्छ। तपस्या गर्ने मानिसले जसको तपस्या गर्छ, ती प्रभुलाई उसले आफ्नो वशमा ल्याउन सक्दछ। मेरो मनमा भगवान् शङ्करको पाउको सेवा गर्ने प्रबल इच्छा छ। मृत्युञ्जय अर्थात् मृत्युलाई जितेर वशमा राख्ने भगवान् शिवले अवश्य नै मेरो इच्छा पूर्ण गर्नुहुनेछ ॥३२-३४॥

---

११. माधुर्यवाक्यवाचोभिः, इति न.सं.पु.पाठः।
१२. आश्चर्यगद्गदोक्तेन, इति न.सं.पु.पाठः।
१३. ईश्वरेण कृतं यत्तत्तपो वा धर्मसंस्थितिम्।
तस्यैव सहते देहो दुःखं यस्मादयोनिजः, इति न.सं.पु.पाठः।
१४. केवलम्, इति न.सं.पु.पाठः।
१५. विषयासक्तनिष्ठानाम्, इति न.सं.पु.पाठः।
१६. कर्तुर्वश्यो भवेत्परम्, इति न.सं.पु.पाठः।
१७. मत्स्वान्ते विद्यते, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

इत्युक्त्वा प्रययौ देवी व्रतं कर्तुञ्च सत्वरम्। प्राग्भागे नीलकण्ठस्य शृङ्गे महति शीतले ॥३५॥
जया च विजया चैव धर्मशीला तथापरा। ताभिः समञ्च शर्वाणी सस्नौ तीर्थे स्वयं शिवा[१८] ॥३६॥
आरोहत् सा ततः कूटं सर्वोन्नतं समुच्छ्रितम्[१९]। अगम्यं सर्वसत्त्वानां देवानामपि निर्जनम्[२०] ॥३७॥
चकार सा तप आर्या नानाव्रतं सुदुष्करम्। उमादेवी हि शर्वात्मा शर्वाराधनतत्परा ॥३८॥
स्थित्वा तस्याग्नेये[२१] भागे तुङ्गकूटे चकार सा। सुकठोरं तपो गौरी तस्माद्गौर्य्यचलः श्रुतः ॥३९॥
एकाशना तथा नक्तं कुर्वती धर्ममद्भुतम्[२२]। पर्वणि फलमूलानि खादत्येकसमां पुनः ॥४०॥
चान्द्रायणं कठोरञ्च पक्वपर्णान्यभक्षयत्। दूर्वाशनं जलाहारं त्र्यब्दञ्चैव चकार सा ॥४१॥
ततः कृच्छ्रातिकृच्छ्राणि सा कुर्वत्यनिलाशनम्। प्रचकार चतुर्थाब्दं पञ्चवर्षं ततः परम् ॥४२॥
धूम्रपानरता[२३] गौरी शर्वात्मा तच्चकार सा। अधोमुखी तदा भूत्वा वृक्षेऽवलम्ब्य पादुके ॥४३॥
लक्षवर्षैश्च[२४] यत्कृत्यं सुकठोरं तपोऽमरैः। तद्भवान्या कृतं सम्यक् पञ्चवर्षैश्च[२५] कुम्भज ॥४४॥
विमोहयन्ती लोकान्वै पितरं मातरं शिवा। पञ्चाब्दमपि तद्भूत्या मेने पञ्चाहमेव सा[२६] ॥४५॥
एवं कृत्वा तपस्तीव्रं दशाब्दं यावदम्बिका[२७]। समाप्य तद्व्रतं गौरी विप्रेभ्यो दक्षिणां ददौ ॥४६॥
दत्त्वा दायमृषिभ्यश्च सखीभिः सहसा[२८] शिवा। ततोऽगमत् पुनर्गेहं ववन्दे पितरौ गुरू ॥४७॥

---

कार्तिक स्वामीले भन्नुभयो – यति भनेर पार्वती व्रत गर्नका लागि अघिल्तिर रहेको अत्यन्त शीतल नीलकण्ठ पर्वतको शिखरमा जानुभयो। जया, विजया, धर्मशीला र त्यस्तै अरू संगिनीहरूका साथमा रहेकी र आफू शिवस्वरूप बनेकी पार्वतीले तीर्थमा स्नान गर्नुभयो। देवता र कुनै पनि प्राणी पुग्न नसक्ने एकान्तस्थलमा रहेको सबैभन्दा अग्लो शिखरमा आरोहण गरेर आफ्ना सखीहरूलाई पनि छलेर शिवजीको आराधनामा संलग्न भएकी पार्वती देवीले अत्यन्त कठिन किसिमका अनेक व्रतहरू गर्नुभयो ॥३५-३८॥

देवी पार्वतीले नीलकण्ठ पर्वतको आग्नेय दिशातिरको अग्लो शिखरमा बसेर तपस्या गर्नुभयो। त्यसैकारणले गर्दा त्यो पर्वत गौरीपर्वतको नामले प्रसिद्ध भएको छ। पार्वतीले सुरुमा एक छाक बेलुकामा मात्र खाएर धर्म गर्नुभयो। त्यसपछि पर्व-पर्वमा मात्रै फलफूल खाएर एक वर्षसम्म तपस्या गर्नुभयो। पार्वतीले सुकेका पात खाएर कठोर चान्द्रायण व्रत गर्नुभयो।त्यसपछि दूबोमात्र खाएर बस्नुभयो। त्यसपछि जलमात्र खानुभयो। यस्तै किसिमले तीन वर्षसम्म कठोर व्रत गर्नुभयो। त्यसपछि हावा खाएर कठोरभन्दा पनि कठोर कृच्छ्रचान्द्रायण, अतिकृच्छ्रचान्द्रायण जस्ता व्रत चौँथो र पाँचौ वर्षमा गर्नुभयो ॥३९-४२॥

त्यसपछि शिवजीलाई आफ्नो आत्मामा धारण गरेर पार्वतीले धूमपान मात्र गरेर व्रत गर्नुभयो। त्यस समयमा उहाँले रुखमा गोडा बाँधेर उँधोमुन्टो लगाउनुभएको थियो। हे अगस्त्य मुनि ! देवताहरूले जुन कठोर व्रत एकलाख वर्षमा पूर्ण गरेको थिए, त्यो व्रत पार्वतीले पाँचै वर्षमा राम्रोसित पूर्ण गर्नुभयो। सम्पूर्ण लोक,माता तथा पितालाई पनि त्यो विभूतिले मोहित तुल्याउँदै पार्वतीले पाँच वर्षलाई पनि पाँच दिनजस्तै ठान्नुभयो। यसरी पार्वतीले दश वर्षसम्म कठोर तपस्या गर्नुभयो र त्यो व्रत समाप्त गरेर ब्राह्मणहरूलाई दक्षिणा दिनुभयो। ऋषिहरूलाई दिनुपर्ने कुरा दिएर आफ्ना सङ्गिनीहरूका साथ खुसी हुँदै पार्वती घर फर्कनुभयो र आफ्ना पूजनीय मातापितालाई प्रणाम गर्नुभयो ॥४३-४७॥

---

१८. शिवात्मना, इति न.सं.पु.पाठः।
१९. समारुह्य सर्वोन्नते समुच्छ्रिते, इति न.सं.पु.पाठः।
२०. दैवतैरपि निर्जने, इति न.सं.पु.पाठः।
२१. पूर्वाऽग्नये, इति न.सं.पु.पाठः।
२२. धर्मचकार सा, इति न.सं.पु.पाठः।
२३. धूम्रपानं तता, इति न.सं.पु.पाठः।
२४. लक्षवर्षाणि, इति न.सं.पु.पाठः।
२५. पञ्चवर्षाणि, इति न.सं.पु.पाठः।
२६. पञ्चाहमिव मेनिरे, इति न.सं.पु.पाठः।
२७. यावद्दशाब्दमम्बिका, इति न.सं.पु.पाठः।
२८. सा ताभिः समं मुदा, इति न.सं.पु.पाठः।

ददतुराशिषं तस्यै पितरौ ह्यचला भव[२९] ॥४८॥

नानाव्रतं तत्र चकार भूयः सा सर्वमासं सततं हि गौरी ।
वक्ष्याम्यहं ते शृणु दान्त तद् वै नूनं विधानं विविधं यथा त्वम्[३०] ॥४९॥

इति श्रीस्कन्दपुराणे हिमवतखण्डे उमातपःसिद्धिर्नाम षट्त्रिंशोऽध्यायः ॥३६॥

---

बाबु–आमाले पनि पार्वतीलाई आफ्नो भाव अचल होऊ भनेर आशीर्वाद दिए। त्यसपछि फेरिभगवती गौरीले सबै महिनामा निरन्तर विभिन्न किसिमका व्रतहरू गर्नुभयो। हे अगस्त्य मुनि ! ती व्रतका सबै विधानहरू म तपाईंलाई बताउँछु, सुन्नुहोस् ॥४८–४९॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गत हिमवतखण्डको उमाको तपस्याको सिद्धिनामक छत्तीसौं अध्याय पूर्ण भयो ।

---

२९. तस्मै पितरौ ह्यचलन्तदा, इति न.सं.पु.पाठः । ३०. वक्ष्याम्यहं ते शृणु दान्त तद्वै नूनं विधानं विविधं यथा त्वम्, इति न.सं.पु.पाठः ।

# सप्तत्रिंशोऽध्यायः

भगवतीगौरीकृतव्रतवर्णनम्

स्कन्द उवाच

आषाढे मासि सम्प्राप्ते लिङ्गं संस्थाप्य पार्थिवम्। उमादेव्युग्रनामानमानर्च्व विविधार्हणैः ॥१॥
एकभक्तं ततो धीमन्नुमादेवी च भोजनम्। भूरिखण्डाज्यसम्मिश्रान् सक्तूनक्तं बुभोज सा[1] ॥२॥
गोमयञ्च ततः प्राश्य सर्वयज्ञफलप्रदम्। अभूज्जितेन्द्रिया गौरी[2] शिवपूजनतत्परा ॥३॥
पौर्णमास्याममावास्याञ्चतुर्दश्यष्टमीषु च। प्रतिपदि च सङ्क्रान्त्यां नवम्याञ्च विशेषतः ॥४॥
निराहारा शिवा[3] भूत्वा सर्वपर्वसु यत्नतः। भक्त्योपहारकैर्दिव्यैरपूपुजन्महेश्वरम् ॥५॥
शालिपिष्टमयं गेहञ्चकार सुन्दरं ततः। सर्वबीजरसैर्युक्तं सम्पूर्णं शुभलक्षणम् ॥६॥
गृहोपकरणैर्युक्तं मूसलोलूखलादिभिः। सर्वरत्नगवाश्वाद्यैर्दासीशय्यादिभिर्युतम्[4] ॥७॥
एतैः पिष्टमयैः सर्वैः प्रदीपादिभिः शोभितम्[5]। सर्वभक्ष्यसमाकीर्णं गन्धमाल्यैः प्रपूरितम् ॥८॥
श्वेतरक्तासितैः पद्मैर्ध्वजैर्वस्त्रैः सुशोभितम्। चतुर्विधेन संयुक्तं वलिना सर्षपेण तु ॥९॥
आषाढ्यां स्थापयित्वा सा तद् गृहं शङ्कराग्रतः[6]। सर्वोपकरणोपेतं प्रणिपत्य न्यवेदयत्[7] ॥१०॥

---

## अध्याय- ३७

### भगवती गौरीले गरेका व्रतको वर्णन

कार्तिक स्वामीले भन्नुभयो – आषाढ महिना लागेपछि पार्वतीले शिवजीको पार्थिवलिङ्ग स्थापना गर्नुभयो र रुद्रका नामहरूको उच्चारणपूर्वक विभिन्न पूजासामग्रीले पूजा गर्नुभयो। हे बुद्धिमान् अगस्त्य मुनि ! पार्वती कहिले एकभक्त रहनुहुन्थ्यो त कहिले प्रशस्त घ्यू, चिनी मिलाएको सातु बेलुका भोजन गर्नुहुन्थ्यो। त्यसपछि सबै यज्ञको फल दिने गोबरमात्र खाएर शिवपूजामा एकाग्र बन्नुहुन्थ्यो र नियममा रही जितेन्द्रिय हुनुभएको थियो। उहाँले यत्नपूर्वक पूर्णिमा, औंसी, चतुर्दशी, अष्टमी, प्रतिपदा, सङ्क्रान्ति, नवमी आदि विशेष दिन र अन्यसम्पूर्ण पर्वहरूमा निराहार बस्नुभयो। सम्पूर्ण पर्वमा निराहार रहेर उहाँले भक्तिपूर्वक दिव्य उपहारहरू चढाई भगवान् शङ्करको विशेष किसिमले पूजा गर्नुभयो ॥१-५॥

त्यसपछि पार्वतीले शालिधानको चामलको पिठोले सुन्दर घर बनाउनुभयो। सम्पूर्ण शुभ लक्षणहरूले युक्त त्यो घर सबै बीज, सबै रस, मुसल, ओखल आदि घरका लागि आवश्यक पर्ने उपकरणहरूले सुसज्जित थियो। सबै पिष्टमय रत्न, गाई, घोडा, दासी, शय्याद्वारा अलङ्कृत त्यस घर विभिन्न बत्ती, सबै किसिमका खाद्यान्न, चन्दन, माला आदिले भरिभराउ थियो ॥६-८॥

उमाले त्यस घरलाई सेता, राता कमल र वस्त्रका ध्वजाहरूले सुशोभित तुल्याउनुभयो। सस्यूँ मिसिएका चार किसिमका बलिको पनि व्यवस्था गर्नुभयो। आषाढमासको पूर्णिमाका दिन प्रणाम गरी सम्पूर्ण उपकरणहरूले सम्पन्न त्यो पिठाको घर शिवजीको अगाडि राखेर उहाँलाई अर्पण गर्नुभयो ॥९-१०॥

---

१. चकार च, इति न.सं.पु.पाठः।
२. नेमी, इति न.सं.पु.पाठः।
३. ततः, इति न.सं.पु.पाठः।
४. अलङ्कृतम्, इति न.सं.पु.पाठः।
५. प्रतीपाद्युपशोभितम्, इति न.सं.पु.पाठः।
६. आषाढे पूर्णमास्यां वै गृहं स्थाप्य शिवाग्रतः, इति न.सं.पु.पाठः।
७. निवेदितम्, इति न.सं.पु.पाठः।

ततो व्रतावसाने सा भोजयामास ब्राह्मणान्[८] । ददौ गोमिथुनं भक्त्या शिवमुद्दिश्य दक्षिणाम् ॥११॥
सर्पिषा पूर्णपात्रञ्च पयसा मधुना तथा । ददौ वासांसि विप्रेभ्यो जलपूर्णघटं पुनः ॥१२॥
यज्ञसूत्रं सुवर्णञ्च फलानि करकाँस्तथा । ददौ भक्त्या च विप्रेभ्यः शिवमुद्दिश्य शैलजा ॥१३॥
एवं संस्कृत्य सा देवी ह्याषाढे मासि सुव्रतम् । प्रदक्षिणां विधायाऽद्या स्तुतिं चक्रे हि[९] भावतः ॥१४॥
ततश्च श्रावणे सर्वं संस्थाप्य लिङ्गमैश्वरम् । अपूपुजन्मुदा युक्ता नानोपहारपूजनैः ॥१५॥
ततोऽभक्षच्च पिण्याकं प्रणिवेद्य हराय च । निशासु सुव्रता गौरी सा जग्राह सकृत् सकृत्[१०] ॥१६॥
क्षीरषष्टिकभक्तं सा भुनक्ति स्म मुदा निशि । निवेद्याऽऽदौ हरायैव ब्राह्मणाय तथा पुनः ॥१७॥
भूत्वा ततो निराहारा सर्वपर्वसु यत्नतः । उपहारार्च्चनैर्भक्त्या मुदा शर्वमपूपुजत् ॥१८॥
श्रावणे पूर्णमास्याञ्च चकार तिलपर्वतम् । बहुशृङ्गसमायुक्तमुमा देवी मुदान्विता ॥१९॥
शैलं तिलमयं विप्र सङ्कीर्णं सर्वधातुभिः । बहुकाञ्चनसंयुक्तं पताकाध्वजशोभितम् ॥२०॥
एवं निर्माय सा शैलमर्पयामास भक्तितः[११] । उमा देवी च शर्वाय गन्धमाल्यार्च्चनैर्युतम् ॥२१॥
प्रणिपत्य पुनः शर्वं सा देवी भक्तिपूर्वकम् । परिक्रम्य ततो भूयस्तुष्टाव हि पुनः पुनः ॥२२॥
अभोजयत्ततो विप्रान्भूरिभोजनकाङ्क्षिणः । शिवमुद्दिश्य भक्त्या च दक्षिणाश्च ददौ पुनः ॥२३॥
सुवर्णालङ्कृतं कृष्णं ददौ गोमिथुनं पुनः । त्रिंशत्पलं हिरण्यञ्च दक्षिणाञ्च द्विजन्मने ॥२४॥
वासोयुग्मं ददौ गौरी विप्राय सुसितं नवम् । यज्ञसूत्रं पुनश्छत्रं भानुवृष्टिनिवारकम् ॥२५॥
ददौ भूयो महादेवी करकांश्च समूलकान् । मोदकान्यपि नैकानि[१२] शिवमुद्दिश्य सर्वशः ॥२६॥

व्रतको अन्त्यमा उहाँले आनन्दपूर्वक ब्राह्मणलाई भोजन गराउनुभयो । शिवलाई समर्पण गर्दै उहाँले दक्षिणा र दुईवटा गाईसमेत ब्राह्मणलाई दान गर्नुभयो । उहाँले ब्राह्मणलाई घ्यू, दूध र महले भरिएको पूर्णपात्र, जलपूर्ण कलश तथा वस्त्रहरूका साथै जनै, सुन, कमण्डलु र उत्तम फलहरू शिवजीलाई लक्ष्य गरेर भक्तिपूर्वक ब्राह्मणहरूलाई दिनुभयो । यसरी पार्वतीले आषाढ महिनाभरि भावपूर्वक व्रत गर्नुभयो र भगवान्को प्रदक्षिणा गर्दै सर्वप्रथम स्तोत्रहरू पाठ गर्नुभयो । त्यसपछि श्रावण महिनामा पार्वतीले पार्थिव लिङ्ग स्थापना गरी विभिन्न पूजासामग्रीहरूद्वारा भक्तिपूर्वक शिवलिङ्गको पूजा गर्नुभयो । व्रतालु पार्वतीले भक्तिपूर्वक पूजा गरिसकेपछि शिवजीलाई अर्पण गरेको तिलकल्क (खली) रूप नैवेद्य लिएर अलि-अलि रातमा खानुभयो । सुरुमा शिवजीलाई खीर र साठी धानको भात अर्पण गरेपछि मात्र ब्राह्मणहरूलाई दिएर नै रातमा पार्वती खीर यद्वा दूध र भात खानुहुन्थ्यो ॥११-१७॥

सम्पूर्ण पर्वहरूमा प्रसन्नतापूर्वक उपवास बसी पार्वतीले अनेक पूजासामग्री लिएर शिवजीको विशेष अर्चना गर्नुभयो । देवी पार्वतीले धेरै टाकुरा भएका तिलको पर्वत बनाएर श्रावणपूर्णिमाको दिन शिवजीलाई अर्पण गर्नुभयो । उहाँले तिलले बनेको, सम्पूर्ण धातुले युक्त भएको, धेरै सुन प्रयोग गरिएको, पताका र ध्वजाले सुशोभित पर्वत बनाउनुभयो र त्यसमा चन्दन, माला र पूजासामग्री पनि राखेर भक्तिपूर्वक शिवजीलाई चढाउनुभयो । पार्वतीले भक्तिपूर्वक प्रणाम गरेर शिवजीको बारम्बार परिक्रमा गरी उहाँलाई प्रसन्न तुल्याउनुभयो ॥१८-२२॥

त्यसपछि उहाँले प्रचुर मिष्ट भोजनको इच्छा गर्ने ब्राह्मणहरूलाई भोजन गराउनुभयो र भक्तिपूर्वक शिवलाई लक्ष्य गरेर ती ब्राह्मणहरूलाई दक्षिणा दिनुभयो । उहाँले त्यसपछि सुनले अलङ्कृत दुईवटा गाई दान गरी तीसपला सुन र दक्षिणा पनि ब्राह्मणहरूलाई दिनुभयो । पार्वतीले ब्राह्मणलाई राम्ररी सिएको एकजोर नयाँ लुगा र जनै अनि घाम र पानी छेक्ने छाता पनि दान गर्नुभयो । फेरि महादेवीले शिवजीलाई लक्ष्य गरेर भारी, कमण्डलु र विभिन्न प्रकारका लड्डुहरू पनि दान गर्नुभयो ॥२३-२६॥

८. विप्रान् भोजयते सुखम्, इति न.सं.पु.पाठः ।
९. स्तोत्रञ्चकार, इति न.सं.पु.पाठः ।
१०. सकृत्सकृद्धि भक्तितः, इति न.सं.पु.पाठः ।
११. एवं कृत्वा च तच्छैलं निवेदयति, इति न.सं.पु.पाठः ।
१२. मोदकान् विविधांश्चैव, इति न.सं.पु.पाठः ।

एवं कृत्वा व्रतं देवी श्रावणे मासि कुम्भज। विधिपूर्वं समं सख्या व्रतं भूयः प्रचक्रमे ॥२७॥
प्राप्ते भाद्रपदे मासि संस्थाप्य लिङ्गमुत्तमम्। गन्धोपहारपूजाभिस्त्र्यम्बकाख्यमपूपुजत् ॥२८॥
निवेद्य त्र्यम्बकायादौ चोमादेवी महाव्रता। एकभक्तं निशायां हि भुनक्ति स्म निरन्तरम् ॥२९॥
हुतशेषं ततो धीमन् विल्वपत्रं पवित्रकम्। निशायां बुभुजे नित्यं[१३] वृक्षमूलाश्रिता दिवा ॥३०॥
निराहारा ततो भूयश्चोमाऽभूदद्रिकन्यका। सर्वपर्वसु यत्नेन शुचिः शिवार्चने रता ॥३१॥
ततो भाद्रपदे पूर्णे पूर्णिमायां घटोद्भव। चकार गिरिजा देवी शैलं शालिमयं पुनः[१४] ॥३२॥
शृङ्गवृक्षैः समायुक्तं सर्वधातुविभूषितम्। सपताकध्वजैर्युक्तं गन्धमाल्यैः प्रपूजितम् ॥३३॥
वस्त्रप्रवेष्टितं दिक्षु सितवितानशोभितम्। एवं निर्म्माय शैलेन्द्रं शूलिने सा न्यवेदयत्[१५] ॥३४॥
प्रणिपत्य ततो भूयस्त्र्यम्बकमीश्वरं विभुम्। पर्यक्रमत्तदा भक्त्या तुष्टाव लोकसुन्दरी ॥३५॥
अभोजयत्ततो गौरी शिवभक्तान्द्विजान्मुने। अन्नञ्चतुर्विधं पूर्णं भूरिभोजनभाविनः ॥३६॥
गोमिथुनानि च विप्रेभ्यो दक्षिणाश्च ददौ पुनः। शिवमुद्दिश्य भक्त्या च तिलोदककुशैर्मुने ॥३७॥
ददौ वासोयुगान्याऽऽर्या विप्रेभ्यो हि कमण्डलुम्[१६]। यज्ञसूत्राणि पूतानि चोपानहौ तथोत्तमौ[१७] ॥३८॥
कृत्वैवं विधिवद्धर्म्ममुपोष्य सर्वपर्वसु। पूजति स्मेश्वरं देवी वाञ्छति स्माऽन्यमासि तत्[१८] ॥३९॥

---

हे अगस्त्य मुनि ! यसरी श्रावण महिनाको व्रत पूर्ण गरिसकेपछि आफ्ना सङ्गिनीहरूका साथ बसेर फेरि पनि पार्वतीले व्रत गर्न लाग्नुभयो। पार्वतीले भाद्र महिना लागेपछि उत्तम शिवलिङ्ग स्थापना गर्नुभयो र चन्दन आदि पूजासामग्रीद्वारा त्र्यम्बक नाम गरेका भगवान्को पूजा गर्नुभयो। व्रतालु पार्वतीले रातमा पहिले भगवान् शङ्करलाई अर्पण गरेर सधैं एक छाक मात्र खानुहुन्थ्यो। देवी पार्वतीले दिनमा हवन गरेर बाँकी रहेको पवित्र बेलपत्रमात्र रातमा रुखमुनि बसेर एक समय भोजन गर्नुहुन्थ्यो। पार्वतीले पवित्र भएर त्यस महिनाका सबै पर्वहरूमा निराहार बसेर शिवजीको पूजा गर्नुभयो ॥२७–३१॥

हे अगस्त्य मुनि ! भाद्र महिना पूर्ण भएपछि पार्वतीले पूर्णिमाको दिनमा धानको पर्वत बनाउनुभयो। अनेक शिखर भएको त्यस पर्वतलाई पार्वतीले सुवर्ण आदि धातुहरू, अनेक किसिमका ध्वजापताकाहरू, चन्दन, माला, विभिन्न किसिमका वस्त्र तथा सेता चँदुवाहरूले अलङ्कृत तुल्याउनुभयो र त्यो धान्यपर्वत शिवजीलाई अर्पण गर्नुभयो। त्यसपछि भगवान् शङ्करको पाउमा परेर तीनै लोकमा अत्यन्त सुन्दरी पार्वतीले उहाँको भक्तिपूर्वक परिक्रमा गर्नुभयो र उहाँलाई प्रसन्न तुल्याउनुभयो ॥३२–३५॥

हे अगस्त्य मुनि ! त्यसपछि पार्वतीले धेरै भोजन चाहने शिवभक्त ब्राह्मणहरूलाई चारै किसिमका अन्न भोजन गराउनुभयो। हे अगस्त्य मुनि ! भोजन गराएपछि उहाँले तिल, जल र कुश लिएर सङ्कल्प गर्दै शिवजीलाई लक्ष्य गरेर भक्तिपूर्वक ब्राह्मणहरूलाई एक जोडी गाई र दक्षिणा दिनुभयो। भगवती पार्वतीले ब्राह्मणहरूलाई एक जोडी वस्त्र, कमण्डलु, दक्षिणा, पवित्र, जनै, छाता, जुत्ता र उत्तम पदार्थ दिनुभयो। यसरी विशेष पर्वहरूमा उपवास उहाँले भगवान् शिवको पूजा गर्नुभयो। त्यसपछि अन्य महिनाहरूमा पनि भगवती पार्वतीले शिवजीको विशेष पूजा गर्ने इच्छा गर्नुभयो ॥३६–३९॥

---

१३. अभोजयन्निशायां सा, इति न.सं.पु.पाठः।
१४. शालिमयञ्च पर्वतम्, इति न.सं.पु.पाठः।
१५. शैलं सा निवेदयति स्म शूलिने, इति न.सं.पु.पाठः।
१६. कराकुलाम्, इति न.सं.पु.पाठः।
१७. नरोत्तमान्, इति न.सं.पु.पाठः।
१८. ववाञ्छे चान्यमासि तत्, इति न.सं.पु.पाठः।

आश्विने मासि सम्प्राप्ते[१९] लिङ्गं संस्थाप्य पार्थिवम्। अपूपुजन्मुदा गौरी भक्त्या पञ्चोपचारकैः ॥४०॥
ततः प्राश्नद् घृतं पूतमकरोन्नक्तभोजनम्। विनिवेद्येश्वरायाऽऽर्या भक्तिपूर्वं स्वयं पुनः ॥४१॥
आश्वयुजि ततो मासे सुपूर्णे[२०] पूर्णिमादिने। सुवर्णवस्त्रसंयुक्तञ्चकार धान्यपर्वतम् ॥४४॥
नानारत्नसमाकीर्णं बहुशृङ्गप्रकल्पितम्। भूषितं गन्धमाल्यैश्च फलमूलैः प्रशोभितम् ॥४५॥
एवं निर्माय चाऽऽदाय गौरी धान्यगिरिं ततः। प्रणिपत्येश्वरायाऽशु न्यवेदयत् सहाऽर्चनैः[२१] ॥४६॥
कृत्वा प्रदक्षिणां रुद्रभक्तिपूर्वं मुहुर्मुहुः। तुष्टाव त्रिविधैर्गौरी नम्रा नाम जजाप च[२२] ॥४७॥
शिवभक्ताँस्ततो विप्रान्भोजयति स्म शैलजा। अन्नञ्चतुर्विधं भूरि भावयन्ती[२३] मुहुर्मुहुः ॥४८॥
गोमिथुनं ददौ भूयः शिवमुद्दिश्य धीमते। भक्तिपूर्वं तदा गौरी जाम्बूनदञ्च दक्षिणाम् ॥४९॥
यज्ञसूत्रञ्च वासांसि करकांश्च समूलकान्। ददौ विप्राय भक्त्या च शिवः प्रीतो भवत्विति ॥५०॥
सुवर्णप्रतिमा भूयः कृष्णाजिनं तथाविधम्। ददौ भक्त्या च विप्रेभ्यः शिवमुद्दिश्य हर्षिता ॥५१॥
एवं कृत्वाऽऽश्विने मासि चोपवासव्रतानि च। अकाङ्क्षदन्यमासे[२५] सा व्रतोपवासपूजनम् ॥५२॥
कार्त्तिके रुद्रनामानं संस्थाप्य विधिवत्पुनः। अर्चति स्म तदा गौरी नानोपहारपूजनैः ॥५३॥
गन्धैः पुष्पैश्च धूपैः सा दीपमालासुशोभनैः। पायसैरन्यनैवेद्यैर्दध्योदनैरपूजयत् ॥५४॥
ततः प्राश्नादम्बिका[२६] सा दधि च पायसं पुनः। विनिवेद्य च रुद्राय सन्ततं भक्तिपूर्वकम्[२७] ॥५५॥

---

आश्विन महिना लागेपछि पार्थिवलिङ्ग स्थापना गरेर भगवती पार्वतीले भक्तिपूर्वक पञ्चोपचार विधिले शिवजीको पूजा गर्नुभयो। त्यसपछि भगवती आर्या उमाले भक्तिपूर्वक ईश्वरलाई अर्पण गरेर उहाँले पवित्र घ्यूमात्र खाई रातमा मात्र भोजन गर्नुभयो। विशेष पर्वदेखि अतिरिक्त दिनमा भगवान् शङ्करलाई अर्पण गरेर खोचामा राखी पार्वतीले प्रसन्न हुँदै चौलानी पिठनुभयो। यस्तै महिनाका दुबै पक्षका पवित्र पर्वहरूमा भोकै बसेर पार्वतीले भगवान् शङ्करको पूजा गर्नुभयो ॥४०-४३॥

आश्विन महिना पूर्ण भएपछि पूर्णिमाको दिन सुन, कपडा तथा अनेक रत्नले सजाइएको, धेरै टाकुराहरू भएको तथा चन्दन, माला, फलफूल, कन्दमूल आदि समावेश गरिएको हुँदा अत्यन्त राम्रो देखिने धान्यपर्वत सिर्जना गर्नुभयो र शिवजीलाई नमस्कार गरेर समर्पण गर्नुभयो। त्यसपछि शिवजीलाई परिक्रमा गरेर नम्र हुँदै उहाँले नाम लिएर अनेक किसिमका स्तुति र नमस्कार गर्नुभयो ॥४४-४७॥

धान्याचलको पूजा समाप्त गरेपछि पार्वतीले शिवभक्त ब्राह्मणहरूलाई चारै किसिमका अन्नहरूको भावना गरेर बारम्बार भोजन गराउनुभयो। पार्वतीले शिवलाई लक्ष्य गरेर ब्राह्मणहरूलाई भक्तिपूर्वक एक जोडी गाई, सुन र दक्षिणा पनि दिनुभयो। पार्वतीले जनै, लुगा, कमण्डलु र अङ्खोरा शिवजी प्रसन्न हुनुहोस् भनेर भक्तिपूर्वक ब्राह्मणलाई दान गर्नुभयो। प्रसन्न भएर शिवजीलाई लक्ष्य गरी पार्वतीले भक्तिपूर्वक ब्राह्मणहरूलाई सुनको प्रतिमा र मृगचर्म दान गर्नुभयो। यसरी आश्विन महिनामा उपवास र व्रत गरिसकेपछि पार्वतीले अर्को महिनामा पनि व्रत तथा उपवास गर्ने इच्छा गर्नुभयो ॥४८-५२॥

कार्तिक महिनामा रुद्र नाम गरेका भगवान्‌को लिङ्गलाई विधिपूर्वक स्थापना गरेर पार्वतीले विभिन्न पूजासामग्रीद्वारा भगवान् शिवजीको पूजा गर्नुभयो। पार्वतीले चन्दन, फूल, धूप, सुन्दर माला, बत्ती, खीर, दही-चामल आदि नैवेद्यहरू चढाएर भगवान्‌को पूजा गर्नुभयो। त्यसपछि पार्वतीले भक्तिपूर्वक दही र पायस शिवजीलाई समर्पण गरेर आफूले पनि भोजन गर्नुभयो ॥५३-५५॥

---

१९. प्राप्ते चाश्वयुजे मासे, इति न.सं.पु.पाठः।
२०. ततश्चाश्वयुजे मासे पूर्णायाम्, इति न.सं.पु.पाठः।
२१. निवेदयति स्म पूजनैः, इति न.सं.पु.पाठः।
२२. त्रिविधं गौरी नम्रा ननाम नाम च, इति न.सं.पु.पाठः।
२३. भावयँश्च, इति न.सं.पु.पाठः।
२४. कटकांश्च, इति न.सं.पु.पाठः।
२५. चकाङ्क्षे चान्यमासे, इति न.सं.पु.पाठः।
२६. ततो प्राशयदार्या, इति न.सं.पु.पाठः।
२७. भक्तिपूर्वेण सन्ततम्, इति न.सं.पु.पाठः।

घृतक्षीरौदनं गौरी भुनक्ति स्म निशासु च। फलमूलानि भक्त्या सा रुद्राय विनिवेद्य च ॥५६॥
गुडाज्यमिश्रपिण्याकं मासान्ते विनिवेद्य सा। शङ्कराय समभौक्षीत्[२८] स्वयं गौरी व्रतस्थिता ॥५७॥
ततः पर्वसु सर्वेषु सूपोषिता हि शैलजा। रुद्रपूजारता नित्यं रुद्रध्यानेषु तत्परा ॥५८॥
ततो मासे च पूर्णे वै पूर्णिमायां मुदाऽन्विता। पर्वतं मेरुनामानञ्चकार रत्नसंयुतम् ॥५९॥
सर्वधातुसमायुक्तं सर्वबीजरसादिभिः। सर्वर्तुपुष्पसंयुक्तं[२९] सर्वरत्नोपशोभितम् ॥६०॥
शृङ्गैश्च बहुभिर्युक्तं वितानच्छत्रशोभितम्। गन्धैर्माल्यैस्तथा धूपैः प्रदीपैश्चाऽपि शोभितम् ॥६१॥
तस्य मूर्ध्नि शिवं धृत्वा सह देव्या तथाऽमरैः। शालिपिष्टमयं कृत्वा सायुधैश्च सवाहनैः ॥६२॥
एवं निर्माय शैलेन्द्रं तं विनिवेद्य शैलजा। रुद्रस्य दक्षिणे भागे चाऽपूपुजन्महोत्सवैः ॥६३॥
रुद्रभक्तांस्ततो विप्रानभोजयद् यथासुखम्[३०]। चतुर्विधानि चान्नानि भावयन्ती यथेप्सितम् ॥६४॥
गोद्वयं सा ददौ विप्रश्रेष्ठाय दक्षिणां तथा[३१]। वाससामपि युग्मानि यज्ञसूत्रं स्वनिर्मितम् ॥६५॥
शर्कराज्यप्रमिश्रञ्च पिण्याकमोदकं तथा। विप्रेभ्यः प्रददौ गौरी करकांश्च समूलकान् ॥६६॥
तिलकाञ्चनसम्मिश्रान्द्विजातिभ्यो ददौ पुनः। सर्वं सा शिवमुद्दिश्य प्रीतश्चाऽस्तु शिवस्ततः ॥६७॥

स्कन्द उवाच

सम्प्राप्ते मार्गशीर्षे च व्रतारम्भञ्चकार सा। उमाकुण्डे सिद्धतीर्थे स्नात्वा हि सर्वदाऽद्रिजा ॥६८॥
संस्थाप्य पार्थिवं लिङ्गं पूजति स्म महोत्सवैः। भक्त्या पञ्चोपचारैः सा जागृतिभिर्निशासु[३२] च ॥६९॥

---

पार्वतीले रातमा घ्यू, पायस, फल तथा कन्दमूल शिवजीलाई भक्तिपूर्वक समर्पण गरेर आफूले पनि खानुभयो। व्रत बसेकी गौरीले महिनाको अन्त्यमा सखर, घ्यू मिसाएर बनाइएको नैवेद्य भगवान् शङ्करलाई अर्पण गरेर आफूले पनि भोजन गर्नुभयो। त्यसपछि त्यस महिनाका सबै पर्वहरूमा राम्रोसित उपवास बसेर पार्वती शिवजीको पूजामा तत्पर हुनुभयो। उहाँ नित्य शिवजीमा तल्लीन भई ध्यान गर्नुहुन्थ्यो ॥५६-५८॥

महिना पुगिसकेपछि प्रसन्न भएर पूर्णिमाको दिन उहाँले रत्नै-रत्नले खचिखचाउ भएको मेरु नाम गरेको पर्वत बनाउनुभयो। यो पर्वत अनेक धातुहरूले युक्त, सबै प्रकारका बीजरस आदिले सुसम्पन्न र सम्पूर्ण धातु तथा रत्नले सजाइएको थियो। यो पर्वत विभिन्न शिखरहरूले सजिसजाउ भएको थियो, चँदुवाको छाताले सुन्दर देखिन्थ्यो र चन्दन, माला, धूप तथा बत्तीले अलङ्कृत थियो ॥५९-६१॥

त्यस पर्वतको शिरमा देवी र देवताहरूका साथमा रहेका शिवजीको स्थापना गरिएको थियो। शालिधानको चूर्णबाट बनेको शिवजीको मूर्ति, वाहन र शस्त्रहरूद्वारा यो पर्वत सुसज्जित थियो। यसरी पार्वतीले मेरुपर्वतको सृजना गर्नुभयो र ठूलो उत्सवका साथ शिवजीको दक्षिणपट्टि राखेर त्यसको अर्चना गर्नुभयो। त्यसपछि पार्वतीले रुद्रभक्त ब्राह्मणहरूलाई चारै किसिमका अन्नहरू जुटाएर इच्छा अनुसार आनन्दित भई भोजन गराउनुभयो। भोजन गराएपछि उहाँले ब्राह्मणहरूलाई एक-एक जोर गाई, दक्षिणा, एक-एक जोर वस्त्र र आफैँले बनाएका जनै प्रदान गर्नुभयो। पार्वतीले शिवजी प्रसन्न हुनुहोस् भन्दै सखर र घ्यू मिलाएर बनाइएको पिठाको लड्डु तथा तिल र सुनले भरिएका कमण्डलु र अङ्खोरा पनि ब्राह्मणहरूलाई दान गर्नुभयो ॥६२-६७॥

कार्तिक स्वामीले भन्नुभयो - मङ्सिर महिना सकिएपछि फेरि पार्वतीले सिद्धतीर्थमा रहेको उमाकुण्डमा स्नान गरेर अर्को व्रत आरम्भ गर्नुभयो। उहाँले शिवजीको पार्थिव लिङ्गको स्थापना गरेर अनेक उत्सव गर्दै भक्तिपूर्वक पञ्चोपचार विधिले रातमा जाग्राम बसेर पूजा गर्नुभयो ॥६८-६९॥

---

२८. रुद्राय समभुञ्जीत, इति न.सं.पु.पाठः।
२९. सर्वधातुसमायुक्तम्, इति न.सं.पु.पाठः।
३०. विप्रान् सम्भोजयद् यथासुखम्, इति न.सं.पु.पाठः।
३१. विप्रेभ्यो गां ददौ युग्मां सदक्षिणां पुनस्तथा, इति न.सं.पु.पाठः।
३२. जागरणैर्निशासु, इति न.सं.पु.पाठः।

प्रतिनिशं[३३] ततो गौरी एकभक्तञ्चकार वै। यवान्नं पयसा युक्तं सगुडाज्यं नवान्नकम् ॥७०॥
निवेद्य शङ्करायादौ नित्यञ्चाभौक्षीदद्रिजा। रुद्रध्यानरता नित्यं तत्परा रुद्रप्राप्तये[३४] ॥७१॥
सर्वपर्वस्वभूद् गौरी निराहारा जितेन्द्रिया। शङ्करात्मा समं सख्या जागर्ति स्म निशासु च ॥७२॥
ततः पूर्णे च मासे सा पूर्णिमायां शुभानना। चकार वृषभं शुभ्रं शालिपिष्टमयं शुभम् ॥७३॥
गन्धमाल्यैरलङ्कृत्य भूषणैर्भूषितञ्च तम्। निवेदयति रुद्राय पुरो देशे कपालिनः ॥७४॥
संपूज्य विधिवल्लिङ्गं पञ्चोपचारकैर्मुदा। परिक्रम्य ततो गौरी भक्त्या तुष्टाव तं पुनः ॥७५॥
ततश्चाऽभोजयद्विप्रान्हविष्यान्नं घृताप्लुतम्। यवान्नं पयसा युक्तं भूरिभोजनतत्परान् ॥७६॥
कपिलाः सन्ददौ भक्त्या सुवर्णदक्षिणां मुदा। कुशोदकैर्द्विजातिभ्यः शिवात्मा भक्तिपूर्वकम्[३५] ॥७७॥
शिवमुद्दिश्य तस्माच्च प्रीयतां भगवान् शिवः। इति वाक्यं विधायाऽशु गोपुच्छं तत्करे ददौ ॥७८॥
वासांसि यज्ञसूत्राणि ददौ सा वंशडल्लके[३६]। करकं मोदकं भक्त्या विप्रेभ्यो लवणं तथा[३७] ॥७९॥
ब्राह्मणेभ्यो दरिद्रेभ्यः सुवर्णानि च भूरिशः। रुक्मयज्ञोपवीतानि कारुण्येन च सा ददौ[३८] ॥८०॥
चतुर्विधानि भोज्यानि यथेच्छं भूरिशो ददौ[३९]। ददौ च फलमूलानि शर्कराज्यदधीनि च ॥८१॥

---

त्यसपछि पार्वतीले रातमा दूध र सखर मिसाएको जौको नयाँ अन्न एक छाक मात्र खानुभयो। शिवजीलाई प्राप्त गर्ने इच्छाले व्रतमा तल्लीन पार्वतीले रुद्रको सधैँ ध्यान गर्दै उहाँलाई अर्पण गरेर मात्र भोजन गर्नुहुन्थ्यो। शङ्करको स्वरूप भएकी पार्वतीले सम्पूर्ण पर्वमा निराहार बसेर जितेन्द्रिय बनी साथीहरूका साथ रातमा जाग्राम बस्नुहुन्थ्यो। महिना पूर्ण भएपछि पूर्णिमाको दिन सुन्दर अनुहार भएकी पार्वतीले शालिधानको चामलको पिठाले सेतो कल्याणकारी साँढे बनाउनुभयो ॥७०-७३॥

उहाँले त्यो साँढेलाई चन्दन, माला र गहनाले अलङ्कृत तुल्याएर भगवान् शङ्करको अगाडि राखेर उहाँलाई समर्पण गर्नुभयो। पार्वतीले विधिपूर्वक पञ्चोपचार विधिले प्रसन्न भएर लिङ्गको पूजा गर्नुभयो र वरिपरि परिक्रमा गरेर भक्तिपूर्वक शिवजीलाई प्रसन्न तुल्याउनुभयो। त्यसपछि पार्वतीले धेरै खान चाहने ब्राह्मणहरूलाई दूधसहितको घ्यूमा डुबेको खाद्यान्न भोजन गराउनुभयो। उहाँले कैला गाईहरू भक्तिका साथ दान गर्नुभयो। भक्तिपूर्वक कुश, पानी लिई सङ्कल्प गरेर आफू शिव नै बनी ब्राह्मणहरूलाई सुवर्ण दक्षिणा पनि दिनुभयो ॥७४-७७॥

शिवलाई लक्ष्य गरेर भगवान् शिव प्रसन्न हुनुहोस् भन्दै गाईको पुच्छर ब्राह्मणहरूको हातमा राखिदिनुभयो। उहाँले बाँसको डालामा राखेर वस्त्र, यज्ञसूत्र, कमण्डलु, लड्डु र नून भक्तिपूर्वक यथाविधि ब्राह्मणलाई प्रदान गर्नुभयो। करुणामयी पार्वतीले दरिद्र ब्राह्मणहरूलाई धेरै सुन, चाँदीले बनेका जनै प्रदान गर्नुभयो। उहाँले इच्छाअनुसार चारै किसिमको धेरै भोजन, फल, कन्दमूल, सखर, घ्यू र दही दान गर्नुभयो ॥७८-८१॥

---

३३. निशां प्रति, इति न.सं.पु.पाठः।
३४. तत्प्रलब्धाय तत्परा, इति न.सं.पु.पाठः।
३५. भक्तिपूर्वं शिवात्मना, इति न.सं.पु.पाठः।
३६. ददौ वासांसि विप्रेभ्यो यज्ञसूत्राणि डल्लकैः, इति न.सं.पु.पाठः।
३७. करकान्मोदकान्भक्त्या लवणानि विधानतःइति न.सं.पु.पाठः।
३८. ददौ कारुण्यकात्मना, इति न.सं.पु.पाठः।
३९. यथेप्सितानि भूरिशः, इति न.सं.पु.पाठः।

मार्गशीर्षे महामासे कृत्वा चैतद् व्रतं पुनः । इयेष चाऽन्यमासे सा व्रतं कर्त्तुं शिवात्मिका[४०] ॥८२॥
सा मार्गशीर्षेऽतिवरे हि गौरी कृत्वा व्रतं भूतिकरञ्च भूयः ।
कर्त्तुञ्च वाञ्छां गिरिशस्य चक्रे पौषे च मासे व्रतकं फलाढ्यम् ॥८३॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे गौरीव्रते सप्तत्रिंशोऽध्यायः ॥३७॥

---

मङ्सिर महिनामा यो व्रत गरिसकेपछि अरू महिनामा पनि शिवस्वरूपा पार्वतीले व्रत गर्ने विचार गर्नुभयो । उहाँले अत्यन्त उत्तम मार्ग महिनाको कल्याणदायक व्रत सकेपछि पौष महिनामा पनि फलदायक व्रत गर्ने इच्छा गर्नुभयो ॥८३॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गत हिमवत्खण्डको भगवती गौरीद्वारा गरिएको शिवजीको तपस्यानामक सैंतीसौं अध्याय पूर्ण भयो ।

---

४०. शिवात्मना, इति न.सं.पु.पाठः ।

# अष्टात्रिंशोऽध्यायः

## भगवतीगौरीकृता विविधा व्रतोपासनाः

स्कन्द उवाच

पौषे मासे च सम्प्राप्ते शम्भुनामानमीश्वरम्। संस्थाप्याऽऽनर्च सा गौरी पञ्चभिरूपचारकैः[1] ॥१॥
नैवेद्यं यावकं प्रस्थं क्षीरसिद्धं घृतप्लुतम्। न्यवेदयत् श्रद्धया सा[2] चतुर्विधञ्च शम्भवे ॥२॥
अप्राशच्च स्वयं गौरी शालिगोधूमगोरसान्। निशासु चाऽसकृत्सख्या सार्द्धं निरन्तरं मुदा ॥३॥
निराहारा ततश्चाऽभूत्सर्वपर्वसु यत्नतः। शिवार्चनरता नित्यं शम्भुध्याने च तत्परा ॥४॥
ततः पौषे प्रपूर्णे च पूर्णिमायां महाव्रता। त्रिशूलं निर्ममे पिष्टैः पात्रे संस्थाप्य[3] ताम्रके ॥५॥
गन्धपुष्पैरलङ्कृत्य वितानध्वजशोभितम्। शूलं न्यवेदयत् गौरी पूजयित्वा त्रिशूलिने[4] ॥६॥
अभोजयदुमा विप्रानष्टौ भोज्यं यथेप्सितम्[5]। यावकं क्षीरसिद्धं सा गुडदध्याज्यमोदकम्[6] ॥७॥
प्रददौ गाश्च विप्रेभ्यो भूयश्च रुक्मदक्षिणाः। प्रीयतां भगवान्मेऽजः वदन्तीति धियाऽद्रिजा ॥८॥
दासीदासयुतं गेहं शय्याधान्यधनान्वितम्। वस्त्रालङ्कारभाण्डाढ्यं ददौ विप्राय शैलजा ॥९॥
लवणं सा ददौ[7] भूयः सुवर्णेनाङ्कितं मुदा। तिलकाञ्चनमादौ च ददौ दीनाय वाक्यतः ॥१०॥

---

## अध्याय- ३८

### भगवती गौरीले गरेका विभिन्न व्रत र उपासना

कार्तिक स्वामीले भन्नुभयो – पौष मास लागेपछि पार्वतीले शम्भु नाम गरेका शिवजीको स्थापना गरेर पञ्चोपचार विधिले उहाँको पूजा गर्नुभयो। उहाँले प्रशस्त घ्यू, दूध हालेर बनाइएको जौको पिठोको एक पाथी हलुवा, नैवेद्य र चार प्रकारका भोजन भक्तिपूर्वक शिवजीलाई चढाउनुभयो। गौरी आफूले पनि रातमा प्रसन्न हुँदै मार्सी चामल तथा गहुँको पिठोबाट बनेको भोजन सङ्गिनीहरूका साथ बसेर बारम्बार भोजन गर्नुभयो। उहाँ पौषका सबै पर्वमा निराहार बस्नुहुन्थ्यो, शिवजीको पूजा गर्नुहुन्थ्यो र उहाँकै ध्यान गर्नुहुन्थ्यो ॥१–४॥

पौष महिना पूर्ण भएपछि पूर्णिमाको दिन व्रत बसेकी पार्वतीले तामाको भाँडामा राखेर पिठोको त्रिशूल बनाउनुभयो। पार्वतीले त्यो त्रिशूललाई चन्दन र फूलले सिँगारेर चँदुवा र ध्वजाले सुशोभित तुल्याई शिवजीका सामु अर्पण गर्नुभयो। त्यसपछि पार्वतीले आठ जना ब्राह्मणहरूलाई इच्छाअनुसार दूधमा पाकेको जौको हलुवा, चाकु, दही, घ्यू र लड्डुहरू भोजन गराउनुभयो। पार्वतीले अनादि भगवान् शिव ममाथि प्रसन्न हुनुहोस् भन्दै फेरि पनि ब्राह्मणहरूलाई गाई, असर्फी र दक्षिणा दान दिनुभयो र दास–दासी, शय्या, धान, धन, लुगा, अलङ्कार, भाँडा आदिले युक्त भएको घरसमेत ब्राह्मणलाई दान गर्नुभयो। उहाँले अत्यन्त खुसी भएर विधिपूर्वक दुःखी मानिसहरूलाई तिल, सुन र अरूलाई सुनले सहित भएको नुन दान गर्नुभयो ॥५–१०॥

---

१. स्थाप्यर्चति स्म गौरी वै पञ्चोपचारकार्चनैः, इति न.सं.पु.पाठः।
२. निवेदयति भक्त्या सा चतुर्विधैश्च, इति न.सं.पु.पाठः।
३. निर्ममे पिष्टमयं शूलं पात्रे चास्थाय, इति न.सं.पु.पाठः।
४. निवेदयति तं गौरी चाभ्यर्च्येशञ्च शूलिने, इति न.सं.पु.पाठः।
५. अभोजयत्ततो विप्रानष्टौ भोज्यान् यथेप्सितान्, इति न.सं.पु.पाठः।
६. यावकान् क्षीरसिद्धान् सा गुडाध्वाज्यमोदकम्, इति न.सं.पु.पाठः।
७. लवणैः पुरुषं भूयः, इति न.सं.पु.पाठः।

ईन्धनानि ददौ[८] गौरी शीतार्त्ताय कृशाय च[९]। घृतेन पूर्णं पात्रं च ददौ भक्त्या शिवात्मिका[१०] ॥११॥
रुक्मयज्ञोपवीतानि वासांसि कम्बलान् मुदा। उपानहौ तथा छत्रं ददौ गौरी द्विजन्मने ॥१२॥
करकं मोदकं भूयः[११] फलमूलाद्यडल्लकान्। अन्नञ्चतुर्विधं दिव्यं सते दीनाय सा ददौ[१२] ॥१३॥
कृत्वैवं पौषमासे सा मनोरथकरं व्रतम्। इयेष चाऽन्यमासे च व्रतं कर्त्तुं महामनाः ॥१४॥
प्राप्ते माघे वरे मासे संस्थाप्य पार्थिवं मुदा। पदार्थैर्बहुभिर्देवी पूजयामास चेश्वरम्[१३] ॥१५॥
पञ्चोपचारकैर्दिव्यैर्घृतैर्गन्धाक्षतैः पुनः। अर्चीति स्म तिलैरर्घ्यैर्ददौ च तिलयावकम् ॥१६॥
तिलधेनुं गुडाद्यञ्च तिलमिश्रितमोदकम्। कृशरं सर्पिषा युक्तं पायसञ्च निवेदितम् ॥१७॥
एकभक्तं सदा नक्तं भुनक्ति स्माऽऽलिभिः समम्। कृशरां घृतसंयुक्तां यावकं पायसं मुदा ॥१८॥
पिण्याकं शर्कराज्याक्तं सघृतं तिलयावकम्। ऊष्णं पयो गुडैर्मिश्रं पत्रपुटेन सा पपौ ॥१९॥
निवेद्य विधिवद् गौरी शङ्कराय सभक्तिकम्[१४]। निरन्तरञ्च तत्सर्वं भुनक्ति स्माऽऽलिभिः सह ॥२०॥
सर्वपर्वसु सा गौरी निराहारा त्वभूत् पुनः। रुद्रध्याने रता नित्यं तत्पूजायां समर्पिता[१५] ॥२१॥
पूर्णे मासे च माघे सा ह्यावेद्य घृतकम्बलम्। संस्कृत्याऽपूजदीशानं पूर्णिमायां महोत्सवैः ॥२२॥
लिङ्गं पिष्टमयं कृत्वा दीपमाल्योपशोभितम्। माल्योपकरणैर्युक्तं शूलिने सा न्यवेदयत्[१६] ॥२३॥
कृष्णं गोमिथुनं गौरी शिवमुद्दिश्य सन्ददौ। सुवर्णञ्च मुदा भक्त्या दरिद्राय द्विजन्मने ॥२४॥

---

पार्वतीले जाडाले कक्रक्क परेको दुब्ला मानिसलाई शिवस्वरूप मानेर भक्तिपूर्वक दाउराका साथ घ्यूले भरिएको भाँडो पनि दान गर्नुभयो। पार्वतीले चाँदी, जनै, वस्त्र, कम्मल, जुत्ता र छाता ब्राह्मणलाई अर्पण गर्नुभयो। कमण्डलु, लड्डु, फल र कन्दमूलले भरिएका डाला र चार किसिमका अलौकिक अन्न पनि पार्वतीले दुःखी ब्राह्मणलाई दिनुभयो। यसरी पौष महिनामा इच्छा पूर्ण गर्ने यस्तो व्रत गरिसकेपछि पार्वतीले अर्को महिनामा पनि फेरि व्रत गर्ने इच्छा गर्नुभयो ॥११-१४॥

माघ महिना लागेपछि पार्वतीले माटेको लिङ्ग स्थापना गर्नुभयो र विभिन्न पदार्थले भगवान्को पूजा गर्नुभयो। उहाँले घ्यू, जल, अर्घ्य, चन्दन, अक्षता, तिल आदि चढाएर पञ्चोपचार विधिले भगवान्को पूजा गर्नुभयो र उहाँलाई तिल तथा जौको हलुवा चढाउनुभयो। त्यस्तै उहाँले तिलको गाई, प्रशस्त घ्यू, चाखु मिसाई बनाएको तिलको लड्डु, घ्यू हालेको खिचडी र पायस भगवान् शङ्करलाई अर्पण गर्नुभयो ॥१५-१७॥

यस्तो व्रत गर्दा पार्वती आनन्दपूर्वक साथीहरूका साथमा बसेर रात परेपछि घ्यू राखेको खिचडी र जौको खीर एक छाक खानुहुन्थ्यो। उहाँ खलीको लेदो, सखर र घ्यू हालेको लड्डु, घ्यू हालेको तिल र जौको हलुवा खानुहुन्थ्यो र सखर हालेको तातो दूध पातको दुनामा पिउनुहुन्थ्यो। भक्तिले युक्त भई पार्वतीले विधिपूर्वक महेश्वरलाई समर्पण गरेर त्यो नैवेद्य साथीहरूका साथ बसेर खानुहुन्थ्यो। माघका सबै पर्वहरूमा पार्वती निराहार बस्नुहुन्थ्यो र शिवजीको ध्यानमा मग्न भएर उहाँकै पूजामा खट्नुहुन्थ्यो ॥१८-२१॥

माघ महिना पूर्ण भएपछि पार्वतीले शिवजीलाई घ्यू र जल अर्पण गर्नुभयो र पूर्णिमाको दिन महोत्सव गरेर संस्कार गरी महादेवको पूजा गर्नुभयो। पार्वतीले शिवजीलाईपिठोको लिङ्ग बनाएर बत्ती, माला र अन्य उपकरणहरूले सुशोभित बनाई अर्पण गर्नुभयो। खुसी हुँदै भक्तिपूर्वक पार्वतीले शिवजीलाई लक्ष्य गरेर दरिद्र ब्राह्मणहरूलाई काला दुईवटा गोरु र सुन दिनुभयो ॥२२-२४॥

---

८. ततो, इति न.सं.पु.पाठः।
९. कृशाङ्गिने, इति न.सं.पु.पाठः।
१०. शिवात्मना, इति न.सं.पु.पाठः।
११. करकान् मोदकान् भूयः, इति न.सं.पु.पाठः।
१२. ददौ दीनाय च द्विजे, इति न.सं.पु.पाठः।
१३. पूजयति महेश्वरम्, इति न.सं.पु.पाठः।
१४. महेश्वराय भक्तितः, इति न.सं.पु.पाठः।
१५. तत्पूजने हि तत्परा, इति न.सं.पु.पाठः।
१६. निवेदितञ्च शूलिने, इति न.सं.पु.पाठः।

अभोजयत्ततो विप्रान्भावयन्त्यमिताशनान् । कृशरां पायसं साऽऽज्यं[१७] गुडक्षीरं यथेप्सितम् ॥२५॥
यावकं तिलसंयुक्तं तिलानां मोदकानि च[१८] । प्रज्ज्वाल्य चेन्धनौघं सा प्रातापयद् द्विजाञ्छुचीन् ॥२६॥
सम्पूज्य विधिवद् गौरी विप्रेभ्यश्च ददौ पुनः । वासांसि यज्ञसूत्राणि करकान् मोदकानि च[१९] ॥२७॥
सर्वरत्नमयं शैलं हिरण्यपात्रसंस्थितम् । दिव्यवस्त्रैः समाच्छाद्य ददौ दीनद्विजन्मने ॥२८॥
तिलपात्रं पुनर्गौरी हिरण्यैर्बहुभिर्युतम्[२०] । आच्छाद्य पट्टवस्त्रेण ददौ निःस्वद्विजन्मने ॥२९॥
प्रीयतां भगवान् रुद्रः सततं मे महाप्रभुः । उवाचेति[२१] धिया गौरी भक्त्या च सर्वकर्मसु ॥३०॥
एवं कृत्वा व्रतं माघे सर्वसौभाग्यदायकम् । भूय इयेष सा गौरी मासाऽन्येषु व्रतोत्तमम्[२२] ॥३१॥
सम्प्राप्ते फाल्गुने मासे चाऽऽनर्च्च सा महेश्वरम् । संस्थाप्य पार्थिवं लिङ्गं पञ्चोपचारपूजनैः ॥३२॥
न्यवेदयच्च गौरी सा क्षीरौदनं समोदकम्[२३] । श्यामाकं क्षीरनीवारं गुडाज्यसंयुतान् तिलान् ॥३३॥
एकभक्तं स्वयं गौरी चाऽकरोत् सखीभिः सह । श्यामकक्षीरनीवारतिलान् सा बुभुजे निशि[२४] ॥३४॥
निराहारा त्वभूद् गौरी सर्वपर्वसु यत्नतः । ईशार्चने रता नित्यं तद्ध्याने च परायणा ॥३५॥
पूर्णे मासे[२५] ततो गौरी पूर्णिमायां महोत्सवैः । आनर्च विधिवद् रुद्रं दीपमालाप्रपूजनैः ॥३६॥
कृत्वा गौरी महास्नानं पैष्टीं सुप्रतिमां ततः । गन्धमाल्यैरलङ्कृत्य स्थापयामास सा पुनः[२६] ॥३७॥

---

त्यसपछि उहाँले ब्राह्मणहरूलाई श्रद्धापूर्वक अनेक किसिमका खानेकुरा, प्रशस्त घ्यू हालेको खिच्रो, खीर, दूध, सखर, तिल र जौको पिठोबाट बनेको अनर्सा, तिलका लड्डुहरू खुवाउनुभयो र प्रशस्त आगो बालेर जाडोमा कठ्याङ्ग्रिएका पवित्र ब्राह्मणहरूलाई तातो पार्नुभयो। पार्वतीले ब्राह्मणहरूलाई विधिवत् पूजा गरेर प्रसन्न हुँदै वस्त्र, जनै, कमण्डलु र लड्डु दिनुभयो। त्यस्तै उहाँले सुवर्णपात्रमा रहेको रत्नयुक्त पर्वतलाई दिव्य वस्त्रहरूले ढाकेर दुःखी ब्राह्मणहरूलाई दान गर्नुभयो ॥२५-२८॥

पार्वतीले रेशमी वस्त्रले धेरै सुन मिसिएको तिलको भाँडो ढाकेर गरीब ब्राह्मणहरूलाई दान दिनुभयो। यसरी सम्पूर्ण कार्य गर्दा पार्वती भक्तिपूर्वक महाप्रभु भगवान् रुद्र सदा प्रसन्न हुनुहोस् भन्नुहुन्थ्यो। यसरी माघ महिनाभरि सारा सौभाग्य बढाउने व्रत गरेर पार्वतीले अर्को महिनामा पनि व्रत गर्ने इच्छा गर्नुभयो ॥२९-३१॥

फाल्गुन महिना लागेपछि उहाँले महेश्वरको पार्थिवलिङ्ग स्थापना गरेर पञ्चोपचार विधिले पूजा गर्नुभयो। देवी पार्वतीले खीर, लड्डु, साँवाधान, दूधे नावो धान, घ्यू, चाकु तथा तिलहरू भगवान्लाई चढाउनुभयो। सङ्गिनीहरूका साथमा बसेर पार्वतीले साँवाधान र दूधे नावो धानको अन्न तथा तिल बेलुका एक छाक मात्र खानुभयो ॥३४॥

सबै पर्वहरूमा निराहार बसेर पार्वतीले यत्नपूर्वक नित्य भगवान् शङ्करको पूजा तथा ध्यान गर्नुभयो। महिना पूर्ण भएपछि पूर्णिमाको दिन ठूलो उत्सव गरेर पार्वतीले बत्ती, माला आदि पूजासामग्रीद्वारा भगवान् शङ्करको पूजा गर्नुभयो। पार्वतीले पिठोले बनाएको प्रतिमालाई महास्नान गराउनुभयो अनि चन्दन र मालाले सजाएर शिवलिङ्गलाई फेरि आफ्नै स्थानमा राख्नुभयो ॥३५-३७॥

---

१७. कृशरान् पायसान् साज्यान्, इति न.सं.पु.पाठः।
१८. यावकान् तिलसंयुक्तान् तथा च तिलमोदकान्, इति न.सं.पु.पाठः।
१९. करकान्मोदकान्मुदा, इति न.सं.पु.पाठः।
२०. बहुहिरण्यमिश्रितम्, इति न.सं.पु.पाठः।
२१. वदन्तीति, इति न.सं.पु.पाठः।
२२. अन्यमासे प्रतोत्तम्, इति न.सं.पु.पाठः।
२३. निवेदयति गौरी च क्षीरोदनञ्च मोदकान्, इति न.सं.पु.पाठः।
२४. श्यामाकक्षीरनीवारान् तिलानप्राशयन्निशि, इति न.सं.पु.पाठः।
२५. पूर्णमासे, इति न.सं.पु.पाठः।
२६. रुद्रायास्थापयत्पुनः, इति न.सं.पु.पाठः।

भोज्यानभोजयद्विप्रान् शिवमुद्दिश्य शैलजा। श्यामाकक्षीरनीवार[२७]गुडाज्यमिश्रितान् तिलान् ॥३८॥
पायसं मधुना युक्तं घृतेन च परिप्लुतम्। भक्त्या हिरण्यवासांसि ततस्तेभ्यो न्यवेदयत्[२८] ॥३९॥
पयस्विनीश्च गाः कृष्णाः[२९] दक्षिणाः कनकं पुनः। तिलोदककुशैर्गौरी दरिद्रेभ्यो ददौ मुदा ॥४०॥
शय्याश्च यज्ञसूत्राणि करकानपि डल्लकान्। तैलोद्वर्त्तनपात्राणि ददौ गौरी हि भक्तितः ॥४१॥
तैलपात्रं हिरण्याक्तं लवणञ्च तथाविधम्। कांस्यपात्रं घृतैः पूर्णं ददौ दीनेभ्यः पार्वती ॥४२॥
प्रीयतां मे शिवो नित्यं भगवान् भूतभावनः। स्मरन्तीति धिया गौरी कर्मनिष्ठा बभूव ह[३०] ॥४३॥
एवं कृत्वा व्रतं दिव्यं सर्वेप्सितफलप्रदम्। पुनरियेष धर्मं सा कर्त्तुमन्ये च मासि वै ॥४४॥
प्राप्ते चैव वरे मासि भक्त्या गौरी निरन्तरम्। सत्कृत्य पार्थिवं लिङ्गमानर्च[३१] विविधार्हणः ॥४५॥
न्यवेदयच्च[३२] नैवेद्यं यवांश्च भर्जितांस्तथा। पिष्टकं पयसा युक्तं करकांश्च समूलकान् ॥४६॥
ततोऽप्राशत्स्वयं गौरी यवांश्च भर्जितान्मुदा। पिष्टकं क्षीरसंयुक्तं करकांश्च निशासु च ॥४७॥
अभूद् गौरी निराहारा सर्वपर्वसु संयमा। स्थाण्वर्चनमहानिष्ठा जपध्यानपरायणा[३३] ॥४८॥
ततः पूर्णे च तन्मासे पूर्णिमायां प्रयत्नतः। समानर्च शिवं सम्यक्पञ्चोपचारपूजनैः ॥४९॥
लिङ्गं पिष्टमयं कृत्वा पूजयित्वोपचारकैः[३४]। पानीयं विधिवद् भक्त्या शूलिने सा न्यवेदयत्[३५] ॥५०॥
शिवभक्तान् द्विजान् गौरी भोजयामास श्रद्धया[३६]। यवान्नं पयसा युक्तं भूरिभोजनभाविनः ॥५१॥

---

त्यसपछि उहाँले साँवाधान, दुधे नावो धानको चामल, घ्यू र चाकु मिसाएको तिलौरी, घ्यू-मह माथिबाट लटक्क जमेको खीर ब्राह्मणलाई भोजन गराई तिनीहरूको भक्ति गरेर असर्फी तथा वस्त्रहरू पनि दान दिनुभयो। पार्वतीले तिल, जल तथा कुश समातेर सङ्कल्प गरी प्रसन्न हुँदै दरिद्रहरूलाई दुहुना काला गाईहरू, दक्षिणा र सुन दिनुभयो। यस्तै उहाँले भक्तिपूर्वक गरीब ब्राह्मणहरूलाई शय्या, यज्ञसूत्र, कमण्डलु, डाला र तेल हाल्ने भाँडाहरू पनि दान गर्नुभयो। यसैगरी उहाँले सुन राखेको तेलको भाँडो, त्यस्तै नूनको भाँडो र घ्यू राखेको काँसको भाँडो पनि गरीबहरूलाई दिनुभयो। सबै काम गर्दा पार्वतीले प्राणीहरूलाई कल्याण गर्ने भगवान् शङ्कर मसँग प्रसन्न हुनुहोस् भन्नुहुन्थ्यो ॥३८-४३॥

यसरी इच्छित फल प्रदान गर्ने दिव्य व्रत गरिसकेपछि अर्को महिनामा उहाँलाई फेरि धर्म गर्ने इच्छा जाग्यो। चैत महिना लागेपछि गौरीले फेरि माटेको लिङ्ग बनाएर विभिन्न पूजासामग्रीद्वारा निरन्तर शिवजीको पूजा गर्नुभयो। त्यसपछि पार्वतीले रातमा भुटेको जौ, दूधमा पकाएको पिठो, अङ्खोरा, नैवेद्य तथा कमण्डलु भगवान्लाई चढाउनुभयो। भगवान्लाई अर्पण गरेपछि पार्वतीले भुटेको जौ, दूध हालेको पिठो र बरफको भोजन गर्नुभयो ॥४४-४७॥

पार्वतीले संयमित ढङ्गले सम्पूर्ण पर्वहरूमा निराहार बसेर शिवजीको पूजा, जप र ध्यान गर्नुभयो। पार्वतीले चैत महिना पूर्ण भएपछि पूर्णिमाको दिन पञ्चोपचार विधिले विशेष प्रकारले शिवजीको अर्चना गर्नुभयो। पार्वतीले पिठोको लिङ्ग बनाएर पञ्चोपचार विधिले पूजा गरी शिवजीलाई भक्तिपूर्वक जल अर्पण गर्नुभयो। त्यसपछि पार्वतीले धेरै खानेकुरा खोज्ने शिवभक्त ब्राह्मणहरूलाई उनीहरूको इच्छाअनुसार दूधमा पकाएको जौको पिठोको भोजन गराउनुभयो ॥४८-५१॥

---

२७. श्यामाकक्षीरनीवारान्, इति न.सं.पु.पाठः।
२८. निवेदयत्, इति न.सं.पु.पाठः।
२९. गाश्च कृष्णाः पयस्विन्यः, इति न.सं.पु.पाठः।
३०. चाभून्निष्ठा च कर्म्मसु, इति न.सं.पु.पाठः।
३१. लिङ्गञ्चानर्च, इति न.सं.पु.पाठः।
३२. निवेदति स्म, इति न.सं.पु.पाठः।
३३. स्थाण्वर्चने सुनिष्ठा वै जपध्यानेषु तत्परा, इति न.सं.पु.पाठः।
३४. पूज्य पञ्चोपचारकैः, इति न.सं.पु.पाठः।
३५. निवेदयति स्म शूलिने, इति न.सं.पु.पाठः।
३६. सम्यग्भवाय यद्यथासुखम्, इति न.सं.पु.पाठः।

ददौ गाः कपिलास्तेभ्यः पयस्विन्योऽद्रिजा मुदा। हिरण्यदक्षिणा भक्त्या शिवमुद्दिश्य मन्त्रतः ॥५२॥
नवानि नैकयुग्मानि दीनेभ्यो वाससां ददौ[३७]। करकान् डल्लकान् रत्नहिरण्यसूत्रकादिकम्[३८] ॥५३॥
हिरण्यनिर्मितं बिम्बं सूर्यस्य शैलजा पुनः। चन्द्रबिम्बं ददौ तेभ्यो रजतं[३९] सुविनिर्मितम् ॥५४॥
हिरण्यं विद्रुमं विल्वफले स्वर्णमये तथा। लालाटञ्चैव सौवर्णं ताटङ्कौ स्वर्णिमौ ददौ[४०] ॥५५॥
हिरण्यवृक्षकं दिव्यं सर्वरत्नफलान्वितम्। गौरी दीनाय विप्राय हिरण्यदक्षिणां ददौ[४१] ॥५६॥
प्रीयतां भगवान् रुद्रो वदन्तीति धियाऽद्रिजा। भक्त्या सर्वञ्च विप्रेभ्यः शिवमुद्दिश्य संददौ ॥५७॥
एवं वरं व्रतं कृत्वा सर्वसौन्दर्य्यभूतिदम्। भूय इयेष सा गौरी व्रतं चान्यद् विभूतिदम्[४२] ॥५८॥
प्राप्ते मासे च वैशाखे शिवं संस्कृत्य पार्थिवम्। आनर्च गिरिजा भक्त्या पञ्चोपचारपूजनैः ॥५९॥
पञ्चामृतेन गौरी सा पञ्चगव्येन शङ्करम्। स्थापयित्वा शिवं भक्त्या सूपचारैरपूजयत्[४३] ॥६०॥
गौरी तदालिभिः सार्द्धमकरोन्नक्तभोजनम्। शाल्यन्नं पयसा सार्धमभुनक्[४४] संयतेन्द्रियाः ॥६१॥
गोष्ठशय्या शिवध्याना[४५] निशासु चैकवस्त्रधृक्। निवेद्य विधिवच्चान्नं कुशोदकं ततः पपौ ॥६२॥
निराहारा ह्यभूद् गौरी सर्वपर्वसु निश्चितम्। संपूज्य विधिवल्लिङ्गं सूपचारैर्महोत्सवैः ॥६३॥
सिते पक्षे तृतीयायां रोहिण्यर्क्षेण संयुजि[४६]। ददौ दानानि विप्रेभ्यः शिवमुद्दिश्य शैलजा ॥६४॥

---

भोजन गराएर प्रसन्न हुँदै पार्वतीले शिवजीलाई लक्ष्य गरी सङ्कल्प पढेर भक्तिपूर्वक दूध दिने कैला गाईहरू, सुन र दक्षिणादानका मन्त्रको उच्चारण गर्दै तिनीहरूलाई अर्पण गर्नुभयो। उहाँले दुःखीहरूलाई एक एक जोर नयाँ लुगा, कमण्डलु, डालो, सुन र जनै पनि दान दिनुभयो। यसैगरी उहाँले सुनले बनाएको सूर्यको मूर्ति र चाँदीले बनाएको चन्द्रमाको मूर्ति पनि प्रदान गर्नुभयो। यस्तै गौरीले उनीहरूलाई मुगा, सुनले बनेका बेल फल, सुनको निधारको गहना र सुनले बनेको कानको कर्णालङ्कारसमेत प्रदान गर्नुभयो ॥५२-५५॥

पार्वतीले गरीब ब्राह्मणलाई सम्पूर्ण रत्नमय फलले युक्त भएको सुनले बनेको रुख, सुन र दक्षिणा पनि दान दिनुभयो। भगवान् रुद्र प्रसन्न हुनुहोस् भन्ने भाव मनमा राखेर पार्वतीले भक्तिपूर्वक सम्पूर्ण वस्तु शिवजीलाई समर्पण गर्दै ब्राह्मणहरूलाई दिनुभयो। सम्पूर्ण सौन्दर्य तथा कल्याणदायक यस्तो व्रत गरेर पार्वतीले पुनः अर्को ऐश्वर्यदायी व्रत गर्ने इच्छा गर्नुभयो ॥५६-५८॥

त्यसपछि वैशाख महिना लागेपछि पार्वतीले माटेको लिङ्गलाई संस्कार गरेर पञ्चोपचार विधिले भक्तिपूर्वक पूजा गर्नुभयो। पार्वतीले पञ्चामृत तथा पञ्चगव्यले शङ्करको पूजा गर्नुभयो रभगवान्लाई अनेक प्रकारका पञ्चोपचार सामग्रीहरू समर्पण गर्नुभयो। पार्वतीले आफ्ना सङ्गिनीहरूका साथ बसेर जितेन्द्रिय बन्दै रातमा दूध र शालिधानको भात खानुभयो ॥५९-६१॥

गोठमा सुत्ने, शिवजीको ध्यान गर्ने, रातमा एउटै वस्त्र लगाउने गरेर पार्वतीले शिवजीलाई विधिपूर्वक अन्नका नैवेद्य चढाएर कुशको जल पिउनुभयो। वैशाख महिनाका सम्पूर्ण पर्वमा विधिपूर्वक विभिन्न पूजोपचार र उत्सवका साथ शिवजीको पूजा गरेर पार्वती निराहार रहनुहुन्थ्यो। पार्वतीले रोहिणी नक्षत्रले युक्त भएको शुक्लपक्षको तृतीयामा शिवजीलाई लक्ष्य गरेर ब्राह्मणहरूलाई सम्पूर्ण वस्तु प्रदान गर्नुभयो ॥६२-६४॥

---

३७. ददौ वासांसि दीनेभ्यो युग्मं युग्मञ्च नूतनम्, इति न.सं.पु.पाठः।
३८. करकाण्डल्लकान् रत्नान् हिरण्ययज्ञसूत्रकान्, इति न.सं.पु.पाठः।
३९. ददौ तस्मै रौप्येन, इति न.सं.पु.पाठः।
४०. विद्रुमं च हिरण्यं च विल्वफले हीरण्मये।
ललाटे चैव सौवर्णं ददौ कर्णौ हिरण्यकौ, इति न.सं.पु.पाठः।
४१. ददौ विप्राय दीनाय दक्षिणाञ्च हिरण्यकम्, इति न.सं.पु.पाठः
४२. चान्यद् व्रतञ्च भूतिदम्, इति न.सं.पु.पाठः।
४३. निवेदति स्म तस्मै च पञ्चोपचारभूरिशः, इति न.सं.पु.पाठः।
४४. युक्तं भुनक्ति, इति न.सं.पु.पाठः।
४५. गोष्ठशायी शिवध्यायी, इति न.सं.पु.पाठः।
४६. रोहिण्यर्क्ष्येण संयुते, इति न.सं.पु.पाठः।

कलधौतं तथा चान्नं घृतपूर्णञ्च पात्रकम्। क्षौद्रयुक्तान् तिलान् गौरी ददौ विप्राय भूरिशः ॥६५॥
तिलकाञ्चनपात्रञ्च तथा लवणपूपकम्। उदकुम्भं ततो गौरी विप्रेभ्यः प्रददौ पुनः ॥६६॥
रुक्मयज्ञोपवीतानि क्षौमवस्त्राणि सा ददौ। दण्डच्छत्राणि दीनेभ्य उपानहश्च भक्तितः ॥६७॥
विप्रानभोजयद् गौरी भूरिभोजनभाविनः। हिरण्यानि ददौ भूयः शिवमुद्दिश्य भक्तितः ॥६८॥
सम्पूर्णे मासि वैशाखे पूर्णिमायां महोत्सवे। पञ्चोपचारपूजाभिः शिवमानर्च सा मुदा ॥६९॥
तण्डुलाढकपिष्टेन कृत्वा कैलाशपर्वतम्। देवीशानसमायुक्तं सर्वधातुविभूषितम् ॥७०॥
कन्दरैर्निचितं चित्रैर्लवणप्रस्थसंयुतम्। ददौ रुद्राय सम्पूज्य रसैः सर्वैः समन्वितम्[४७] ॥७१॥
ततो विप्रान् समाहूय चाऽजुहोत्तन्मुखेषु सा। पायसान्याज्ययुक्तानि[४८] भक्त्या गोक्षीरशर्कराः[४९] ॥७२॥
ततो गौरी च विप्रेभ्यः श्वेता गा भूषिता ददौ[५०]। मिथुनं मिथुनं स्वर्णं त्रिंशत्त्रिंशत्पलं पुनः ॥७३॥
एवञ्च शिवमुद्दिश्य कृत्वा च व्रतमुत्तमम्। इहलोके परे लोके[५१] सर्वसौभाग्यदायकम् ॥७४॥
भूय इयेष सा गौरी चान्यद् व्रतं महोत्सवैः। मनोरथप्रदं धर्म्यं[५२] शिवस्य भूतिदं पुनः ॥७५॥
प्राप्ते मासि वरे ज्येष्ठे लिङ्गं कृत्वा च पार्थिवम्। पशुपतिं समानर्च पञ्चोपचारपूजनैः ॥७६॥
सम्पूज्य विधिवल्लिङ्गं शूलिने सा न्यवेदयत्[५३]। शाल्यन्नं पयसा मिश्रं शर्कराघृतसंयुतम् ॥७७॥
एकभक्तं ततो गौरी निशासु चाऽकरोन्मुदा। शाल्यन्नं पयसा धौतमाज्यक्षीरसमन्वितम्[५४] ॥७८॥
गवां कोटिप्रदानस्य यत्पुण्यं तत्फलप्रदम्। निराहारा ततश्चाऽभूत्सर्वपर्वसु यत्नतः ॥७९॥

---

उहाँले ब्राह्मणलाई सुन, अन्न तथा घ्यूले भरिएको भाँडो, मह मिसिएको तिलजस्ता धेरै वस्तुहरू दान गर्नुभयो। यस्तै उहाँले ब्राह्मणलाई तिल र सुन राखेको भाँडो, नून र पुवा राखेको भाँडो तथा जलले युक्त भएको कलशपनि दान गर्नुभयो। पार्वतीले गरीब ब्राह्मणहरूलाई चाँदी, जनै, रेशमी कपडा, लठ्ठी, छाता र जुत्तासमेत दान दिनुभयो। उहाँले धेरै खान इच्छा गर्ने ब्राह्मणहरूलाई भोजन गराउनुभयो र शिवजीलाई लक्ष्य गरी भक्तिपूर्वक धेरै सुन पनि दान गर्नुभयो। वैशाख महिना पूर्ण भएपछि पूर्णिमाको दिन ठूलो उत्सव गरेर पार्वतीले प्रसन्न हुँदै पञ्चोपचार विधिले शिवजीको पूजा गर्नुभयो ॥६९॥

त्यसपछि पार्वतीले चार पाथी चामलको पिठो ल्याएर शिव र पार्वतीले युक्त भएको, सम्पूर्ण धातुले सुशोभित, विभिन्न गुफाले सम्पन्न, नूनका ढुङ्ग्राहरूले विभूषित, विभिन्न रसले युक्त भएको कैलाशपर्वत बनाउनुभयो र पूजा गरेर शिवजीलाई अर्पण गर्नुभयो ॥७०-७१॥

त्यसपछि उहाँले ब्राह्मणहरूलाई बोलाएर उनीहरूलाई भक्तिपूर्वक घ्यू हालेको खीर, चिनी हालेको गाईको दूध खान दिनुभयो। भोजन गराएपछि पार्वतीले सेतो वर्णका जोडा-जोडा गाई र तीस-तीस पला सुन दान गर्नुभयो। यसरी पार्वतीले शिवजीलाई लक्ष्य गरेर यस लोक र परलोकमा सम्पूर्ण सौभाग्य दिने व्रत गर्नुभयो। त्यसपछि पार्वतीले ठूलो उत्सवका साथ मनका इच्छाहरू पूर्ण गरिदिने शिवजीको कल्याणकारक व्रत गर्ने विचार गर्नुभयो ॥७२-७५॥

पार्वतीले जेठ महिना लागेपछि पार्थिव शिवलिङ्ग स्थापना गरेर पञ्चोपचार विधिले भगवान् शङ्करको अर्चना गर्नुभयो। उहाँले विधिवत् लिङ्गको पूजा गरेर सखर, घ्यू र दूध राखेर बनाएको शालिधानको नैवेद्य शिवजीलाई चढाउनुभयो। शिवजीलाई अर्पण गरेर पार्वतीले घ्यू र दूध हालेको शालिधानको अन्न रातमा एक छाक भोजन गर्नुभयो। करोडौं गाई दान गर्दा जुन फल प्राप्त हुन्छ, पार्वतीले सबै पर्वमा सोही फल प्राप्त हुने निराहार व्रत गर्नुभयो ॥७६-७९॥

---

४७. रसैः सर्वैश्च संयुक्तं ददौ रुद्राय पूज्य च, इति न.सं.पु.पाठः।
४८. पायसानि घृतवत्तानि, इति न.सं.पु.पाठः।
४९. पायसान् घृतसंयुक्तान् भक्त्या गोक्षीरशर्करान्, इति न.सं.पु.पाठः।
५०. विप्रेभ्यो गाः श्वेतालङ्कृता ददौ, इति न.सं.पु.पाठः।
५१. परत्रे च, इति न.सं.पु.पाठः।
५२. मनसेप्सितदं धर्मम्, इति न.सं.पु.पाठः।
५३. निवेदति स्म शूलिने, इति न.सं.पु.पाठः।
५४. आज्यक्षीरेण संयुतम्, इति न.सं.पु.पाठः।

ध्यात्वा पशुपतिं देवं तदाराधनतत्परा[५५] । ततोऽकरोत्तृतीयायां पञ्चाग्निव्रतमुत्तमम् ॥८०॥
निराहारा दिवामध्ये ध्यायन्ती शङ्करं[५६] मुहुः । तस्याः स्वेदसमुद्भूता द्विसप्त सरितोऽभवन्[५७] ॥८१॥
कौशिक्यो लोकपावन्यो गण्डक्यश्च तथैव च । ततो विप्रान्मुदाहूय होमञ्चक्रे मुखाग्निषु ॥८२॥
तेभ्यश्चतुर्विधान्नानि स्वर्णं सा श्रद्धया ददौ[५८] । भूयः शुक्लदशम्याञ्च भौमवारेण संयुजि[५९] ॥८३॥
हस्तर्क्षसंयुतायाञ्च ददौ दानानि शैलजा । गाश्चाऽश्वान् तिलधेनूश्च सा ददौ तिलकाञ्चनम् ॥८४॥
उदकुम्भाँश्च विप्रेभ्यः पञ्चरत्नैश्च संयुतान् । ददौ सा शैलजोद्दिश्य शङ्करं लोकशङ्करम्[६०] ॥८५॥
चतुर्विधानि चाऽन्नानि भोजयन्ती यथेप्सितम्[६१] । ततः पूर्णे च तन्मासे पूर्णिमायां महोत्सवैः ॥८६॥
पञ्चोपचारकैः शम्भुमपूपुजद् यथाविधि । शीतोदकेन संस्नाप्य दिव्यचन्दनभूषितम् ॥८७॥
पुष्पदाम स्वयं कृत्वा[६२] तालवृन्तेन साऽव्यजत् । नैवेद्यं पुरतो धृत्वा भक्त्या ध्यानस्थिताऽभवत् ॥८८॥
लेह्यञ्चोष्यं तथा खाद्यं पेयञ्चैव चतुर्विधम् ।
कृत्वा पिष्टमयं लिङ्गं सवेदि वस्त्रवेष्टितम् ॥८९॥
पुष्पमालासमाकीर्णं पञ्चोपचारसंयुतम् । आनीय विधिवद् भक्त्या शिवस्य च पुरो मुदा ॥९०॥
सम्पूज्य तच्च[६३] रुद्राय शैलजा सा न्यवेदयत्[६४] । जागराञ्चाऽकरोद्[६५] गौरी सर्वयामेषु चिन्तिता ॥९१॥

---

पशुपतिको ध्यान गरेर उहाँकै पूजामा तत्पर भएकी पार्वतीले जेठ महिनाको तृतीयाका दिन उत्तम पञ्चाग्नि व्रत गर्नुभयो । पार्वतीले खाना नखाई मध्यदिनमा शिवजीको ध्यान गर्नुभयो । त्यसैबेला उहाँको पसिनाबाट लोकलाई पवित्र गराउने सातवटा कौशिकी नदी र सातवटा गण्डकी नदी गरी चौधवटा नदी बगे । त्यसपछि ब्राह्मणहरूलाई बोलाएर उहाँहरूको मुखरूपी अग्निमा पार्वतीले भोजनरूपी हवन गर्नुभयो । उहाँले उनीहरूलाई चार किसिमका अन्न र सुन पनि दान गर्नुभयो । यस्तै उहाँले मङ्गलबार हस्ता नक्षत्रले युक्त भएको शुक्लदशमीका दिन गोरु, घोडा, तिल, गाई र सुनसमेत दान दिनुभयो ॥८१-८४॥

यसैगरी पार्वतीले शिवजीलाई लक्ष्य गर्दै ब्राह्मणहरूलाई पञ्चरत्नले युक्त भएको जलपूर्ण कलश पनि दान गर्नुभयो । यसपछि उहाँले ब्राह्मणलाई इच्छाअनुसार चारै प्रकारका अन्न भोजन गराउनुभयो । जेठ महिना पूर्ण भएपछि पूर्णिमाका दिन उहाँले ठूलो उत्सव गर्नुभयो । पार्वतीले शिवजीलाई शीतल जलले स्नान गराएर, दिव्य चन्दन लगाइदिएर पञ्चोपचारले यथाविधि पूजा गर्नुभयो । आफैँले फूलको माला बनाएर ताडीको पङ्खाले हम्कनुभयो र भक्तिपूर्वक चाट्ने, चुस्ने, खाने र पिउने, यी चार प्रकारका नैवेद्य शिवजीको अगाडि राखेर उहाँको ध्यान गर्नुभयो ॥८५-८८½॥

ध्यान गरेर पिठोको शिवलिङ्ग बनाई वेदीसहित कपडाले बेरिएको, फूलमालाहरूले ढाकिएको, पञ्चोपचार विधिले पूजा गरिएको शिवलिङ्गलाई विधिवत् शिवजीको अगाडि ल्याई पार्वतीले भक्तियुक्त भई पूजा गर्नुभयो र भगवान्लाई अर्पण गर्नुभयो । महादेवमा आश्रय पाउने कामना राख्ने गौरीले रातका सबै प्रहरमा जाग्राम गर्नुभयो ॥८९-९१॥

---

५५. तत्पूजने हि, इति न.सं.पु.पाठः ।
५६. ध्यायमाना स्वयम्, इति न.सं.पु.पाठः ।
५७. द्विसप्ताश्चापगाऽभवन्, इति न.सं.पु.पाठः ।
५८. तेषां चतुर्विधान्नानि सुवर्णञ्च प्रदापयत्, इति न.सं.पु.पाठः ।
५९. संयुते, इति न.सं.पु.पाठः ।
६०. ददौ सर्वान् द्विजातिभ्यः शिवमुद्दिश्य शैलजा, इति न.सं.पु.पाठः ।
६१. यथेप्सितान्, इति न.सं.पु.पाठः ।
६२. कृत्य, इति न.सं.पु.पाठः ।
६३. तञ्च, इति न.सं.पु.पाठः ।
६४. निवेदयति स्म शैलजा, इति न.सं.पु.पाठः ।
६५. जागरञ्चाकरोद्, इति न.सं.पु.पाठः ।

तत्क्रोडं लब्धुकामा सा गीतवाद्यमहोत्सवैः । निमन्त्रितान् समाहूय विप्रान् तन्मुखवह्निषु ॥९२॥
जुहोति स्माऽद्रिजा भक्त्या भोज्यञ्चैव चतुर्विधम्[६६] । समभ्यर्च्य च तान् गौरी ददौ वासांसि दक्षिणाः ॥९३॥
सुवर्णं गाश्च विप्रेभ्यस्तालवृन्तान्युपानहौ । घृतपूर्णप्रदीपांश्च यज्ञसूत्रं च भाजनम्[६७] ॥९४॥
करकाण्डल्लकानिक्षून् विप्रेभ्यः प्रददौ शिवा । एवं व्रतं कृतं गौर्या सर्वलोकहिताय च ॥९५॥
विवाहो न भवेद्यावच्छिवभक्तिरताऽभवत् ॥९६॥

यच्च व्रतं मे चरितं ह्युमायाः प्रोक्तञ्च रुद्रेण पुरा हिमाद्रौ ॥
श्रुत्वा मुखात्तत्कथितं मया ते स्त्रीणाञ्च धर्मं परमं हि विद्यात् ॥९७॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे उमाव्रतकथनं नामाष्टत्रिंशोऽध्यायः ॥३८॥

---

भगवान् शिवको काखमा बस्न चाहने भगवती पार्वतीले रातभरि गीत, वाद्य आदि उत्सव गरेर प्रातःकाल भएपछि निमन्त्रित ब्राह्मणहरूलाई बोलाएर उनीहरूका मुखरूप अग्निमा भोजनरूपी चरु अर्पण गर्नुभयो । पार्वतीले ती ब्राह्मणहरूलाई सत्कार एवं भक्तिपूर्वक पूजा गर्नुभयो चारप्रकारका भोज्य पदार्थ तयार गरी भोजन गराउनुभयो र उनीहरूलाई वस्त्र, दक्षिणा, सुन, गाई, तारको पङ्खा, जुत्ता, घ्यूमा भिजाएका बत्तीहरू, जनै, भोजन, डालो, बरफका टुक्रा र उखुहरू पनि दिनुभयो ॥८९–९४॥

यसरी पार्वतीले सम्पूर्ण लोकको हित गर्नव्रत गर्नुभयो र विवाह नभएसम्म शिवजीकै भक्तिमा रत हुनुभयो । हे अगस्त्य मुनि ! धेरै अघि हिमालयमा बसेका बेला शिवजीले मलाई पार्वतीले गर्नुभएको यस्तो प्रकारको व्रतका विषयमा बताउनुभएको थियो । उहाँको मुखबाट सुनेर यो वृत्तान्त मैले तपाईंलाई बताएँ । यो स्त्रीजातिहरूको धर्म पनि हो भनेर बुझ्नुहोस् ॥९५–९७॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गत हिमवत्खण्डको
भगवती गौरीले गर्नुभएका अनेक व्रत र उपासनानामक
अठ्तीसौं अध्याय पूर्ण भयो ।

---

६६. चतुर्विधान् यथेप्सितम्, इति न.सं.पु.पाठः ।

६७. यज्ञसूत्रोपभाजनान्, इति न.सं.पु.पाठः ।

# ऊनचत्वारिंशोऽध्यायः

भगवत्या गौर्याऽनुष्ठितव्रतानां महिमा

अगस्त्य उवाच

देव तव प्रसादाद्वै श्रुतमुमाव्रतं मया। श्रुता दानोपवासाश्च श्रुतं स्त्रीणां व्रतं महत्[1] ॥१॥
भूयः श्रोतुञ्च वाञ्छामि त्वत्तो ब्रह्मविदांवरात्। व्रतानाञ्चैव दानानां माहात्म्यं वद मेऽधुना ॥२॥

स्कन्द उवाच

तिथिनक्षत्रराशीनां दिनानाञ्च तथैव च। सर्वेषामात्मरूपा सा ज्ञायतां हि त्वया मुने ॥३॥
तथापि चरितो धर्मस्तया[2] लोकहिताय च। सर्वात्मरूपया देव्या संसारस्थितये पुनः ॥४॥
येषु येषु च कालेषु स्नानदानोपवासकान्। चकार गिरिजा श्रेष्ठस्तत्तत्कालोऽभवन्मुने ॥५॥
स्नानदानोपवासेषु तया[3] प्राप्ताश्च ये तदा। तिथ्यहोवारनक्षत्रराशयः स्युरिहोत्तमाः[4] ॥६॥
ततः प्रभृति चाऽद्यापि व्रतेषु गौरीसेविताः[5]। तिथिवारादयः सन्ति[6] सर्वकर्मफलप्रदाः ॥७॥
तेषां वच्मि फलान्यद्य पक्षयोरुभयोरपि। अन्याऽन्यान्यपि[7] योगानां कर्मणाञ्च पृथक् पृथक् ॥८॥
पूर्णमासी च सङ्क्रान्तिरष्टमी सा चतुर्दशी[8]। नवमी चाप्यमावास्या गरिष्ठा पक्षयोर्द्वयोः ॥९॥
तिथयोऽपि वरा धीमन् रहिता योगराशिभिः। गरिष्ठाश्च भवेयुस्ताः सर्वधर्मफलप्रदाः ॥१०॥

---

अध्याय- ३९

भगवती गौरीले नुष्ठान गरेका व्रत र उपासनाको महिमा

अगस्त्य मुनिले भन्नुभयो – हे कार्तिक स्वामी ! हजुरको अनुकम्पाले गर्दा मैले पार्वतीले गरेका व्रत, दान, उपवास र स्त्रीजातिहरूको उत्तम व्रत श्रवण गरें। ब्रह्मज्ञानी हजुरबाट म फेरि व्रत र दानको माहात्म्य सुन्न चाहन्छु, मलाई अहिल्यै बताइदिनुहोस् ॥१–२॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! भगवती पार्वती तिथि, नक्षत्र, राशि र दिनहरूकी आत्मा नै हुनुहुन्छ भन्ने कुरा तपाईं बुझ्नुहोस्। सबै तिथ्यादिको आत्मस्वरूप भएर पनि लोककल्याण र संसारको स्थितिका लागि उहाँले यी लौकिक धर्मको आचरण गर्नुभएको हो। जुन–जुन समयमा पार्वतीले स्नान, दान र उपवास गर्नुभएको थियो, तिनै तिनै समय नै उत्तम काल भए। जुन–जुन तिथि, दिन, वार, नक्षत्र र राशिमा पार्वतीले स्नान, दान र उपवास गर्नुभएको थियो तिनै तिथि, दिन, राशि र नक्षत्र नै उत्कृष्ट भए ॥३–६॥

हे अगस्त्य मुनि ! त्यस समयदेखि आजसम्म पनि पार्वतीले गरेका व्रतले गर्दा ती सम्पूर्ण तिथि, दिन आदि पवित्र भएकाले तिनले सम्पूर्ण कर्मको फल दिन्छन्। दुबै पक्षका ती दिनहरूमा हुने फल, योग र कर्महरूको पनि बेग्लाबेग्लै फलहरू म बताउँछु। दुबै पक्षका पूर्णिमा, सङ्क्रान्ति, चतुर्दशी, अष्टमी, नवमी र अमावास्या तिथि अत्यन्त महत्त्वपूर्ण मानिन्छन्। हे अगस्त्य मुनि ! योग र राशिहरू नमिले तापनि ती तिथिहरू सबै धर्मका लागि फलदायक र अत्यन्त श्रेष्ठ छन् ॥७–१०॥

---

१. तस्या दानोपवासांश्च स्त्रीणां भवेद् व्रतोत्तमम्, इति न.सं.पु.पाठः।
२. चरितं धर्मं तया, इति न.सं.पु.पाठः।
३. तस्याः, इति न.सं.पु.पाठः।
४. तिथ्याहोराशिनक्षत्राः सुश्रेष्ठास्ते भवन्ति वै, इति न.सं.पु.पाठः।
५. गौरीव्रताद्द्विजोत्तम, इति न.सं.पु.पाठः।
६. भूता भवन्ति ते सर्वे, इति न.सं.पु.पाठः।
७. अन्यान्यञ्चैव, इति न.सं.पु.पाठः।
८. चतुर्दश्यष्टमी तथा, इति न.सं.पु.पाठः।

उमाया नवमी प्रीता हरस्य तिथिरष्टमी। तयोरन्योन्यसंस्पर्शान्[९] महापुण्यतमे स्मृते ॥११॥
तयोर्दत्तं हुतञ्चैव स्नातं जप्तं तथार्चनम्। सर्वेषाञ्च द्विजश्रेष्ठ तत्सर्वमक्षयं भवेत् ॥१२॥
ये प्रकुर्वन्ति सत्कर्म सङ्क्रान्त्यां तद्बहुगुणम्। रव्यहर्युक्तसप्तम्यां कोटिकोटिगुणं भवेत् ॥१३॥
तस्यां दानैः पुनः सूर्यो रुद्ररूपः प्रतुष्यति। जपस्नानोपवासैश्च तुष्यन्ति सर्वदेवताः ॥१४॥
तस्याञ्च स्नानमात्रेण सूर्यतुल्यो भवेन्नरः। युगकोटिशतञ्चान्ते सूर्यलोके महीयते ॥१५॥
सोमे बुधे च पूर्णायां[१०] रोहिणी संयुता यदि। तुष्यन्ति सुकृतैर्नॄणां सोमादिसर्वदेवताः ॥१६॥
तत्र स्नात्वाऽर्चितं दत्तं हव्यं कव्यं कृतञ्च यत्। सोमात्मकैर्नरैर्भक्त्या तत्सर्वमक्षयं स्मृतम् ॥१७॥
तस्मिन् दिने नरः स्नात्वोपोषणं च[११] करोति यः। सर्वपापैर्विनिर्मुक्तः सोमतुल्योऽत्र कान्तिभिः ॥१८॥
देहान्ते ह्यमरैश्चाऽसौ सोमयानस्थ आदृतः[१२]। युगकोटिशतं दिव्यं सोमलोके महीयते ॥१९॥
अष्टम्यामार्द्रयुक्तायां युतायामिन्दुना पुनः[१३]। श्रीशम्भुवल्लभायाञ्च[१४] छिद्यन्ते सकलैनसः ॥२०॥
तस्याञ्च स्नानमात्रेण स तुष्यति सदा हरः। सर्वपापैर्विनिर्मुक्तो धर्मात्मा चेत् पुनः किमु[१५] ॥२१॥
तस्यां यत्पूजितं दत्तं हुतं जप्तं च तर्पितम्[१६]। संयुतायाञ्च मूलेन तत्सर्वमक्षयं भवेत् ॥२२॥
यश्च स्नायी तदष्टम्यां यः करोति शिवार्च्चनम्। कल्पकोटिशतं साग्रं रुद्रलोके महीयते ॥२३॥

---

पार्वतीको तिथि नवमी हो र शिवजीको तिथि अष्टमी हो। ती दुई तिथि एकअर्कासँग मिसिए भने अत्यन्त पुण्यदायी हुन्छन् भनिन्छ। हे अगस्त्य मुनि ! त्यस तिथिमा दान दिएको, हवन गरेको, स्नान गरेको, जप गरेको र पूजा गरेको सबै अक्षय हुन्छ। जसले सङ्क्रान्तिका दिन सत्कर्म गर्छन्, तिनीहरूले धेरै गुणा बढी फल पाउँछन्, त्यसमा पनि आइतबाट सप्तमी तिथि पऱ्यो भने त्यो दिन गरेको काम करोडौँ गुणा फलदायी हुन्छ। त्यस्तो सङ्क्रान्तिमा प्रशस्त दान गर्नाले रुद्ररूपी सूर्य भगवान् प्रसन्न हुनुहुन्छ। त्यसमा जप, स्नान र उपवास गर्नाले सबै देवताहरू प्रसन्न हुन्छन्। त्यस सप्तमीका दिन अर्थात् रविसप्तमीका दिन स्नान मात्रै गऱ्यो भने पनि मानिस सूर्यजत्तिकै तेजिलो हुन्छ। शरीर छोडेपछि सय करोड युगसम्म सूर्यलोकमा ससम्मान बस्न पाउँछ ॥११-१५॥

रोहिणी नक्षत्र भएको सोमवार पूर्णिमा परेको छ भने त्यस दिन असल कर्म गर्नाले मानिसहरूका लागि चन्द्रमा आदि गरिएको सबै देवताहरू प्रसन्न हुन्छन्। त्यस्तो पूर्णिमाको दिन सोमस्वरूप भएर मानिसले स्नान, पूजा, दान, होम, तर्पण आदि जे गर्छ, त्यो सबै अक्षय हुन्छ। जुन मानिसले त्यस दिन स्नान गरेर पूजा गर्छ अथवा उपवास बस्छ, त्यो व्यक्ति सम्पूर्ण पापबाट मुक्त भएर चन्द्रतुल्य सुन्दर बन्न पुग्छ। मरेपछि देवताहरूले उसलाई आदर गर्छन्। सोमयानमा बसेर सोमलोक जान्छ र त्यहाँ दुई सय करोड दिव्य वर्षसम्म सोमलोकमा ससम्मान बस्न पाउँछ ॥१६-१९॥

आर्द्रा नक्षत्र र सोमबार परेको अष्टमी शिवको अतिशय प्यारो दिन हुन्छ। त्यस दिन व्रत बस्नाले व्रतीका सबै पाप नाश हुन्छन्। त्यस तिथिमा स्नानमात्रै गऱ्यो भने पनि त्यसदेखि भगवान् सन्तुष्ट हुनुहुन्छ। त्यो सम्पूर्ण पापबाट मुक्त हुन्छ। धर्मात्माको त के कुरा गर्ने ! मूल नक्षत्र परेको त्यस तिथिमा जुन पूजा, दान, हव्य, कव्य र जप गरिन्छ, त्यो सबै अक्षय हुन्छ। त्यस अष्टमीका दिन स्नान गरेर जसले शिवजीको पूजा गर्छ त्यो व्यक्ति सयकोटि कल्पभन्दा पनि बढी समय रुद्रलोकमा ससम्मान बस्छ ॥२०-२३॥

---

९. तयोरन्योन्यमिश्रेण, इति न.सं.पु.पाठः।
१०. पूर्णे सोमे च सौम्येऽह्नि, इति न.सं.पु.पाठः।
११. स्नात्वा आर्चोपोष्यम्, इति न.सं.पु.पाठः।
१२. आर्द्रयन्, इति न.सं.पु.पाठः।
१३. सोमाह्नसंयुते पुनः, इति न.सं.पु.पाठः।
१४. ईश्वरवल्लभायाञ्च, इति न.सं.पु.पाठः।
१५. धर्मकश्चत्पुनः किमु, इति न.सं.पु.पाठः।
१६. तस्यां यत्पूजनं दत्तं हव्यं कव्यं जपं तथा, इति न.सं.पु.पाठः।

महापुण्यञ्चतुर्दश्यां युक्तायामाऽर्द्रया पुनः । स्नानमात्रेण लोकानां तुष्यन्ति सर्वदेवताः ॥२४॥
तस्यां दानार्च्चनं सर्वं हव्यकव्यजपादिकम्[१७] । अन्यासु यत्कृतं तस्मात्[१८] कोटिकोटिगुणं भवेत् ॥२५॥
तस्यां स्नानेन मर्त्यो वै सर्वपापैः प्रमुच्यते ।
शिवार्च्चनरतानाञ्च शृणु वच्मि महाफलम् ॥२६॥
ब्रह्महत्यादिकैः पापैर्मुच्यन्ते तत्क्षणान्नराः । सर्वैः कुलैः समायुक्ता गच्छन्ति दिवि चोत्तमे ॥२७॥
यः पुण्यायाममावास्यां युतायामिन्दुनाऽपि वा । स्नानं दानं हुतं जप्तं करोति चाक्षयं लभेत् ॥२८॥
यः करोति च दर्शेऽह्नि महोत्सवैः शिवार्चनम् । कल्पकोटिशतं दिव्यं रुद्रलोके महीयते ॥२९॥
नवम्याञ्च सुपुण्यायां युतायां मूलभेन हि[१९] । देव्याः सुप्रीतियुक्तायां यत्कर्म चाक्षयं भवेत् ॥३०॥
स्नानादानोपवासाँश्च जप्तहुतानि तद्दिने[२०] । ये कुर्वन्ति च धीमन्तस्तेषां पुण्यफलं शृणु ॥३१॥
अश्वमेधसहस्राणां वाजपेयमखस्य च[२१] । ते लभन्ते च दानानां तीर्थानामपि[२२] यत्फलम् ॥३२॥
एतत्पुण्यं सुखं लब्ध्वा गच्छन्ति शिवसन्निधौ । कोटिकोटिशतं कल्पं मोदन्ते शिवधामनि[२३] ॥३३॥
मार्गकृष्णतृतीयायामुपवासं[२४] करोति या । पुष्यर्क्षेण प्रयुक्तायां तस्याः पुण्यफलं शृणु ॥३४॥
भ्रूणहत्यादिपापैः सा मुक्ता लब्ध्वा मनोरथान् । सूर्यसन्निभयानेन मुदा गच्छत्युमापुरे ॥३५॥

---

आर्द्रा नक्षत्रले युक्त भएको चतुर्दशीमा स्नान गऱ्यो भने पनि मानिसहरूलाई ठूलो पुण्य हुन्छ र सबै देवताहरू सन्तुष्ट हुन्छन् । त्यस तिथिका दिन गरेको दान, पूजा, हव्य, कव्य र जप अरू तिथिमा गरेको कार्यभन्दा करोडौं करोड गुणा बढी फलदायी हुन्छ । त्यस तिथिका दिन स्नान गर्ने मानिस सम्पूर्ण पापबाट मुक्त हुन्छ ।२४-२५½॥

शिवजीको पूजा गर्ने व्यक्तिको कस्तो महाफल हुन्छ, त्यो कुरा बताउँछु, सुन्नुहोस् । त्यस दिन शिवजीको पूजा गर्नाले मानिसहरू ब्रह्महत्या आदि गरिएको सबै पापबाट तुरुन्त मुक्त हुन्छन् । सम्पूर्ण कुलैसहित उनीहरू स्वर्ग जान्छन् । जुन मानिस औंसी अथवा पूर्णिमाको दिन स्नान, दान, होम, जप गर्दछ, त्यसले अक्षय फल पाउँछ । जसले अमावास्याका दिन ठूलो उत्सवका साथ शिवजीको पूजा गर्छ त्यो व्यक्ति दिव्य करोडौं सय कल्पसम्म रुद्रलोकमा ससम्मान बस्न पाउँछ ॥२६-२९॥

मूल नक्षत्रले युक्त भएको नवमी तिथि पार्वतीको अति प्यारो तिथि हो । यस पुण्यतिथिका दिन जे जति शुभ कर्म गरिन्छन् ती सबै अक्षय हुन्छन् । जुन बुद्धिमान् मानिसले त्यस तिथिमा स्नान, पूजा, उपवास, दान, जप र हवन गर्छन् तिनीहरूले पाउने फल सुन्नुहोस् । त्यसरी स्नानादि गर्ने मानिसले हजार अश्वमेध यज्ञ, हजार वाजपेय यज्ञ र सम्पूर्ण पृथ्वीमा गरेको दानको जुन फल हुन्छ, त्यो पाउँछन् । त्यो पुण्य र सुख प्राप्त गरेर तिनीहरू शिवजीको नजिकै पुग्छन् । करोडौं करोड सय कल्पसम्म शिवलोकमा आनन्दसित बस्छन् ॥३३॥

पुष्य नक्षत्रले युक्त भएको मार्गकृष्ण तृतीयाका दिन जुन स्त्रीजातिले व्रत तथा उपवास गर्छे, त्यसको पुण्यफल सुन्नुहोस् । गर्भहत्या आदि गरिएका पापबाट मुक्त भएर ती स्त्रीहरू सम्पूर्ण मनोरथ पूर्ण गरी सूर्यजस्तो तेजिलो यानमा चढेर आनन्दसित पार्वतीको लोकमा पुग्छन् ॥३४-३५॥

---

१७. हव्यकव्यजपं तथा, इति न.सं.पु.पाठः ।
१८. अन्येषु यत्कृतं तद्धि, इति न.सं.पु.पाठः ।
१९. बहुपुण्यां नवम्याञ्च मूलेन संयुतेऽपि वा, इति न.सं.पु.पाठः ।
२०. तस्यां स्नानार्चनोपोष्यदत्तजप्तहुतानि च, इति न.सं.पु.पाठः ।
२१. अश्वमेधसहस्राणि वाजपेयस्तथाविधः, इति न.सं.पु.पाठः ।
२२. पृथिव्यां यानि दानानि सर्वतीर्थेषु, इति न.सं.पु.पाठः ।
२३. शिवलोके प्रमोदते, इति न.सं.पु.पाठः ।
२४. मार्गकृष्णतृतीयायां व्रतोपोष्यम्, इति न.सं.पु.पाठः ।

पौषेऽष्टम्याञ्चतुर्थ्याञ्च युक्तायाञ्च बुधेन वै। आद्रर्या च प्रयुक्तायां सन्तुष्यत्यद्रिजा प्लवात् ॥३६॥
तस्यां दत्तं हुतं जप्तमुपोष्य व्रतपूजनम्। यया कृतं मुदा भक्त्या तस्याः पुण्यफलं शृणु ॥३७॥
सर्वपापैर्विनिर्मुक्ता धनधान्यसमायुता। अविधवा सुतैर्युक्ता भवेज्जन्मनि जन्मनि ॥३८॥
देहान्ते दीप्तयानेन पतिपुत्रान्वयान्विता। कल्पकोटिशतं दिव्यमुमालोके वसेन्मुदा ॥३९॥
माघे सिते चतुर्दश्यां पञ्चम्याञ्च तथैव च। या करोति व्रतं दानं तस्याः पुण्यफलं शृणु ॥४०॥
पातकैश्चाऽतिपापैश्च विमुक्ता सा पुनर्मुने। सर्वसौभाग्यसंयुक्ता चाऽविधवा भवेदिह ॥४१॥
रुद्रदूताश्च[२५] देहान्ते याने दशार्कसन्निभे। आस्थाय सान्वयां ताञ्च वहन्ति[२६] तद्रथोत्तमैः ॥४२॥
गीततालमृदङ्गैश्च प्रोद्धूय चामरैर्मुहुः। नयन्ति तामुमालोकं मोदयन्तः प्रसेवया[२७] ॥४३॥
उमामाराधयन्ती या[२८] पतिपुत्रसमायुता। कोटिकल्पसहस्राणि तस्या लोके[२९] महीयते ॥४४॥
फाल्गुने नवमी शुक्ला मृगेणैव समन्विता। देवानाञ्चैव सर्वेषां प्रीतिदाऽभूत्सदा मुने ॥४५॥
दानधर्मरतानाञ्च[३०] तस्यां स्त्रीणां विशेषतः। देव्याः प्रीतिकरायां हि शृणु वच्मि फलं महत् ॥४६॥
इहलोके सुरूपा सा भर्तृपुत्रसमन्विता। सेव्यते साऽन्यनारीभिः भवेद् भर्तुः प्रिया भृशम् ॥४७॥
सर्वपापैर्विनिर्मुक्ता मयूरयानसंस्थिता। सा च यास्यत्युमालोके कल्पकोटिशतं वसेत् ॥४८॥
शनिसूर्यगुरुज्ञैश्च पुनर्वस्वाख्यतारया[३१]। अष्टमी संयुता चैत्रे तैर्युक्ताऽपि त्रयोदशी ॥४९॥
व्रतमुपोष्य या कुर्यात् तस्मिन्नेव तिथिद्वये[३२]। शिवार्चनरता या च तस्याः पुण्यफलं शृणु ॥५०॥

---

पौष महिनाको अष्टमी र चतुर्थीका दिन बुधबार र आर्द्रा नक्षत्र परेको छ भने त्यस दिन स्नान गर्नाले पार्वती अत्यन्त प्रसन्न हुनुहुन्छ। त्यस दिन जुन स्त्रीले दान, होम, जप, उपवास, व्रत, पूजा भक्तिले गद्गद भएर गर्छे, त्यसको पुण्य फल सुन्नुहोस्। सबै पापबाट मुक्त भएर धन, सम्पत्ति र छोराले युक्त भई जन्म-जम्मा सौभाग्यवती बन्न पाउँछे। मरेपछि पनि सूर्यजस्तै तेजिलो कान्ति भएको विमानमा चढेर पति, पुत्र र वंशसहित उमालोकमा जान्छे र त्यहाँ सय करोड दिव्य कल्प वर्षसम्म आनन्दसित बस्छे ॥३६-३९॥

हे अगस्त्य मुनि ! माघ शुक्लपक्षको चतुर्दशी, पञ्चमी तिथिका दिन जुन नारीले व्रत तथा दान गर्छे, त्यसको पुण्य फल सुन्नुहोस्। साना-ठूला सबै किसिमको पापबाट मुक्त भएर त्यो सौभाग्यवती बन्छे। यस लोकमा विधवा हुन्न। मरेपछि पनि शिवजीका दूतहरूले दश वटा सूर्यजत्तिकै तेजिलो विमानमा राखेर त्यसलाई उत्तम रथले तान्नेछन्। गाना गाउँदै, बाजा बजाउँदै, बारम्बार सेवा र सत्कार गर्दै देवताहरूले पार्वतीको लोकमा लैजानेछन्। गीत गाउँदै, ताली ठोक्दै तथा मादल बजाउँदै, बारम्बार चमर हम्कदै त्यसलाई खुसी तुल्याएर सेवा गरी उमालोकमा लैजान्छन्। पति र पुत्रसहित भएर पार्वतीको आराधना गर्ने नारीले करोड हजार कल्पसम्म उमालोकमा बस्न पाउँछे ॥४०-४४॥

फाल्गुन महिनामा शुक्लपक्षको नवमीका दिन मृगशिरा नक्षत्र पर्‍यो भने त्यो दिन सबै देवताहरूको प्रिय दिन हुन्छ। देवीको अत्यन्त मन परेको त्यस तिथिमा विशेष गरी स्त्रीजातिले दान, धर्म गर्छन् भने त्यसको ठूलो फल हुन्छ, म बताउँछु, सुन्नुहोस्। त्यस्ता नारी यस लोकमा पति, पुत्रसहित रूपवती भएर पतिका अत्यन्त प्यारा हुन्छन्, अरू नारीहरूले पनि त्यसको सेवा गर्छन्। सबै पापहरूबाट मुक्त भएर मयूर आकारको विमानमा चढेर आफ्ना परिवारसहित त्यस्ता नारी उमालोकमा जान्छन् र सय करोड कल्पसम्म त्यहाँ बस्छन् ॥४५-४८॥

चैत्रमासमा शनिबार, आइतबार, बृहस्पतिबार र बुधबारका दिन पुनर्वसु नक्षत्र परेको अष्टमी अथवा त्रयोदशी तिथि छ भने त्यो दिन अति उत्तम हुन्छ। जसले सधैं ती दुबै तिथिमा शिवजीको पूजामा तल्लीन भएर व्रत अथवा उपवास गर्छन्, तिनको पुण्य फल सुन्नुहोस्। ठूला-ठूला महापापबाट मुक्त भएर ती चाँडै नै सुखी हुन्छिन् ॥४९-५०॥

---

२५. रुद्रदूतैश्च, इति न.सं.पु.पाठः। २६. वाह्यन्ते, इति न.सं.पु.पाठः। २७. नीयन्ते तामुमालोकं मोदयंश्च प्रसेवयन्, इति न.सं.पु.पाठः।
२८. स्वाराधयन्नुमादेवीम्, इति न.सं.पु.पाठः। २९. उमालोके, इति न.सं.पु.पाठः। ३०. दानधर्मकृतानाञ्च, इति न.सं.पु.पाठः।
३१. शनिसूर्यगुरुज्ञेन पुनर्वसुवृषेण च, इति न.सं.पु.पाठः। ३२. या करोति व्रतोपोष्य तिथयोश्च तयोः सदा, इति न.सं.पु.पाठः।

पातकादिमहापापैर्मुच्यते सुखिनी भवेत्[३३]। रूपसौन्दर्य्यमाप्याशु प्रभोः सुप्रेयसी भवेत् ॥५१॥
देहान्ते वंशसंयुक्ता यानेन सूर्यवर्च्चसा। समागत्य ह्युमालोकं कोटिकल्पं सुखं वसेत् ॥५२॥
वैशाखे मासि शुक्ले च तृतीयायां करोति या। स्नानोपवासदानानि शैलजा प्रीयते सदा[३४] ॥५३॥
पुण्योपवासदानानां कर्त्र्यां[३५] स्तस्याः फलं शृणु। अपीह बहुपापात्मा पातकैः सा प्रमुच्यते ॥५४॥
भवेन्मधुरवाणी सा विशालाक्षी च कामिनी। सर्वाङ्गसुन्दरी रम्या[३६] पुत्रवती पतिप्रिया ॥५५॥
ततः फलानि देहान्ते लब्ध्वा सा चाक्षयानि च। सान्वया परिवारैश्च यानञ्चाऽऽरोहति ध्रुवम् ॥५६॥
अर्कायुताभयानेन सा गच्छत्युमापुरम्। हर्षाढ्यैः सर्वलोकैश्च धन्या धन्येति शंसिता[३७] ॥५७॥
कल्पकोटिशतं दिव्यमुमालोके वसेन्मुदा। सेवमाना च पार्वत्याः[३८] श्रीपादुकामहोत्पलम् ॥५८॥
ज्येष्ठशुक्लचतुर्दश्यां हस्तर्क्षेण च संयुजि[३९]। करोति प्रीतये देव्याः स्नानदानोपवासकान् ॥५९॥
व्रतस्थायाः स्त्रिया विप्र पुण्यं शृणु वदामि ते। भ्रूणहत्यादिपापैः सा दशभिश्च[४०] प्रमुच्यते ॥६०॥
द्वादश्याञ्चैव पञ्चम्यां पूर्णमास्यां तथैव च। या करोति व्रतं दानं तस्याः पुण्यं विशेषतः ॥६१॥
तुङ्गकुचा तु गौराङ्गी तुङ्गघ्राणा वराक्षिणी। बिम्बोष्ठी रुच्यकर्णा च[४१] कुशला सौरतेषु सा ॥६२॥
रम्भोरू च कृशाङ्गी सा[४२] चन्द्रानना पतिप्रिया। सुदती पद्महस्ता च[४३] मधुवाणी सदा भवेत् ॥६३॥
देहान्ते दीप्तयानेन सा प्रगच्छत्युमापुरम्। कल्पकोटिशतं दिव्यं सेवमाना वसेदुमाम्[४४] ॥६४॥
आषाढे शुक्लपञ्चम्यामेकादश्यां तथैव च। पौर्णमास्यां व्रतं दानं या करोति परायणा ॥६५॥
शृणु फलानि तस्यास्त्वं सर्वपापैर्विवर्जिता। सुन्दरीणाञ्च सर्वासां सौन्दर्यजयिनी भवेत्[४५] ॥६६॥

---

स्वामी र शिवजीको तुरन्त प्रियपात्र बन्छिन्। मरेपछि पनि ती स्त्री कुलैसहित सूर्यजत्तिकै तेजिलो यानमा चढेर उमालोक जान्छिन् र त्यहा करोड कल्प वर्षसम्म सुखसित बस्छिन् ॥५१–५२॥वैशाख शुक्ल तृतीया अर्थात् अक्षय तृतीयाका दिन सधैं उमाको प्रीतिका लागि जुन नारीले स्नान, उपवास, दान र धर्म गर्छिन्, ती स्त्रीले के फल पाउँछिन्, सुन्नुहोस्। ती पापै पापले भरिएको भए पनि सम्पूर्ण पापबाट मुक्त हुन्छिन्। ती नारीको मीठो बोली हुन्छ, आँखा राम्रा हुन्छन्, सुन्दर जिउ हुन्छ, सन्तान प्राप्त गरेर पतिकी प्रिय बन्छिन्। यसरी अक्षय सुखभोग गरेर मरेपछि पनि आफ्ना परिवारसहित करोडौं सूर्यसमान तेजिलो रथमा चढेर ती उमालोकमा जान्छिन्। हर्षले गद्गद भएर सबै मानिसले तिनलाई धन्यवाद दिन्छन्। ती स्त्री दिव्य सय करोड कल्प वर्षसम्म पार्वतीको पाउमा सेवा गरेर आनन्दसित उमालोकमा बस्छिन्। हस्ता नक्षत्रले युक्त भएको ज्येष्ठ शुक्ल चतुर्दशीका दिन जुन नारीले देवीको प्रीतिका लागि स्नान, दान र उपवास गर्छिन्, व्रत बस्ने ती स्त्रीले कस्तो पुण्य फल पाउँछिन्, म भन्छु, सुन्नुहोस्। ती नारी भ्रूणहत्या आदि गरिएका दशै थरी पापबाट मुक्ति हुन्छिन् ॥५३–६०॥

द्वादशी, पञ्चमी र पूर्णिमाका दिन जुन स्त्रीले व्रत र दान गर्छिन्, तिनको विशेष फल सुन्नुहोस्। तिनका स्तन उच्च हुन्छन्, गोरो शरीर हुन्छ, अग्लो नाक हुन्छ, राम्रा आँखा हुन्छन्, गोलकाँक्रीजस्ते ओठ हुन्छ, कान सुन्दर हुन्छन् र ती मैथुनक्रीडामा सिपालु हुन्छिन्। तिनका केराको बोट जस्ता नरम तिघ्रा हुन्छन्, पातलो शरीर हुन्छ, चन्द्रमाजस्तो मुख हुन्छ, कमलका पातजस्तो हात हुन्छन्, अनारका दानाजस्ता दाँत हुन्छन् र उनी सधैं मीठो बोल्न सक्ने हुन्छिन्। मरेपछि सूर्यको जस्तो तेजिलो यानमा चढेर ती उमालोकमा जान्छिन्। दिव्य करोडौं सय कल्पसम्म उमाको सेवा गरेर ती त्यहाँ बस्छिन् ॥६१–६४॥

आषाढ शुक्ल पञ्चमी, एकादशी र पूर्णिमाका दिन जुन नारीले पार्वतीमा मन लगाएर व्रत गर्छिन्, दान गर्छिन्, हे अगस्त्य मुनि तिनको फल म बताउँछु– ती स्त्री सबै पापबाट मुक्त भएर संसारका अरू सबै सुन्दरीहरूको सौन्दर्यलाई पराजित गर्ने महासुन्दरी बन्छिन् ॥६५–६६॥

---

३३. सा सुखी भवेत्, इति न.सं.पु.पाठः। ३४. धर्मोमाप्रीयते सदा, इति न.सं.पु.पाठः। ३५. दानोपवासधर्माणि कर्तुः, इति न.सं.पु.पाठः।
३६. वेत्री, इति न.सं.पु.पाठः।
३७. हर्षाढ्या सर्वलोका वै धान्या धन्येति वादयन्, इति न.सं.पु.पाठः।
३८. प्रसेवयन्नुमादेव्याः, इति न.सं.पु.पाठः।
३९. संयुते, इति न.सं.पु.पाठः।
४०. दशपापैः, इति न.सं.पु.पाठः।
४१. च वरौ कर्णौ, इति न.सं.पु.पाठः।
४२. रम्भोरू च कृशाङ्गी च, इति न.सं.पु.पाठः।
४३. पद्महस्ता सुदन्ती च, इति न.सं.पु.पाठः।
४४. वसेदुमां प्रसेवयन्, इति न.सं.पु.पाठः।
४५. परस्त्रीणाञ्च सर्वासां सुन्दरी सा भवेदिह, इति न.सं.पु.पाठः।

देवासुरमनुष्याश्च मुह्येयुर्वीक्ष्य तां मुहुः[४६]। सा मनोहारिणी यूनां सौन्दर्येण भवेत्पुनः ॥६७॥
स्वर्गं गच्छति देहान्ते सूर्याभयानसंस्थिता। कल्पकोटि वसेद्दिव्यं सोमाङ्घ्रिसेवने रता[४७] ॥६८॥
श्रावणे शुक्लपञ्चम्याममावास्यां करोति या। व्रतं पत्युः प्रिया[४८] सा च यावज्जीवं सुखं वसेत् ॥६९॥
देहान्ते सा च यानेन सूर्यायुताभवर्चसा। समागत्य ह्युमालोकं कोटिकल्प[४९] सुखं वसेत् ॥७०॥
भाद्रे षष्ठ्याञ्च सप्तम्यां द्वादश्याञ्चैव पक्षयोः। या करोति व्रतोपोष्यं सर्वान् कामानवाप्नुयात् ॥७१॥
शुक्लायाञ्च तृतीयायां विशेषेण महातिथौ। या करोति व्रतोपोष्यं तस्याः पुण्यफलं शृणु ॥७२॥
पापैश्च त्रिविधैर्मुक्ता बहुपुत्रवती भवेत्। प्रधाना चाऽबलानां सा पतिप्रियहितैषिणी[५०] ॥७३॥
उमालोके च देहान्ते यानेनाऽर्कनिभेन सा। गोत्रैः समं वसेद् गत्वा कल्पकोटिशतं सुखम् ॥७४॥
ईषेऽष्टम्यां त्रयोदश्यां पूर्णमास्यां करोति या। स्नानोपवासदानार्चाः देव्याः प्रीत्यै मुदाऽन्विता ॥७५॥
शृणु धीर फलं तस्याः सा सर्वपापवर्जिता[५१]। रूपसौन्दर्यमाप्नोति धनधान्यसुतान्विता ॥७६॥
सूर्यप्रतिमयानस्था देहान्ते गोत्रसंयुता। कल्पकोटिशतं दिव्यमुमालोके महीयते ॥७७॥
ततः पुण्यावसाने सा मेदिन्याञ्च प्रजायते। राजस्त्री च ततो भूत्वा विप्रपत्नी च मोक्षगा ॥७८॥
कार्त्तिके शुक्लपक्षे वा नवम्यां या करोति वै। पूर्णिमायामुमाप्रीत्यै स्नानोपवासपूजनम् ॥७९॥
तस्याः पुण्यफलान्याऽऽर्य्य भूत्वा चैकमनाः शृणु। सर्वपापैर्विनिर्मुक्ता स्नानमात्रेण सा पुनः ॥८०॥

देवता, राक्षस र मानिसहरू ती नारीलाई हेरेर बारम्बार मोहित हुन्छन्। सौन्दर्यले गर्दा ती नारीले युवाहरूको हृदयलाई हरण गर्छिन्। मरेपछि सूर्यजस्तै तेजिलो रथमा बसेर ती स्वर्ग जान्छिन्, सहर्ष पार्वतीको पाउको सेवा गरेर दिव्य करोड वर्षसम्म त्यहाँ बस्छिन् ॥६७–६८॥

श्रावण महिनाको शुक्ल पञ्चमी र औंसीका दिन जुन नारी व्रत बस्छिन्, ती बाँचुञ्जेल सुखी र पतिकी अति नै प्रिया हुन्छिन् ॥६९॥ मरेपछि ती नारी दश हजार सूर्यको जस्तो चम्किलो यानमा बसेर उमालोकमा जान्छिन्। एक करोड कल्प वर्षसम्म सुखपूर्वक त्यहाँ बस्छिन् ॥६९–७०॥

भाद्र महिनाको दुबै पक्षको षष्ठी, सप्तमी र द्वादशीका दिन जुन नारीले व्रत र उपवास गर्छिन्, तिनले चिताएको फल पाउँछिन्। हे अगस्त्य मुनि ! विशेष गरेर भाद्र शुक्ल तृतीयाको ठूलो तिथिमा जुन नारीले उपवास गर्छिन्, तिनले प्राप्त गर्ने फलबारे सुन्नुहोस्। ती नारी तीनै किसिमका पापबाट मुक्त हुन्छिन्। तिनका धेरै छोरा हुन्छन्। ती पतिकी प्यारी हुन्छिन् र स्त्रीजातिहरूमा ती प्रधान बन्छिन्। मरेपछि सूर्यको जस्तो कान्ति भएको यानमा चढेर ती उमालोकमा जान्छिन्। कुलैलाई साथमा लिएर करोडौं कल्पसम्म आनन्दसित त्यहाँ बस्छिन् ॥७१–७४॥

आश्विन महिनाको अष्टमी, त्रयोदशी र पूर्णिमाको दिन जुन नारीले देवीको प्रीतिका लागि स्नान, उपवास, दान गर्छिन्, हे अगस्त्य मुनि ! त्यसको फल सुन्नुहोस्। ती स्त्री सम्पूर्ण पापबाट मुक्त भएर धनसम्पत्ति र छोरा प्राप्त गरी रूप र सौन्दर्यले युक्त हुन्छिन्। अन्त्यमा सूर्यबिम्बजस्तो यानमा चढेर आफ्ना सन्तानहरूसितै पार्वतीको परमधाममा जान्छिन् र दिव्य सय करोड कल्प वर्षसम्म पूज्य भएर त्यहाँ रहन्छिन्। पुण्य सकिएपछि ती मर्त्यलोकमा जन्मन्छिन् र महारानी भएर फेरि अर्को जन्ममा सुवासिनी ब्राह्मणी हुन्छिन्, त्यसपछि तिनको मुक्ति हुन्छ ॥७५–७८॥

हे अगस्त्य मुनि ! कार्तिक शुक्लपक्ष नवमी र पूर्णिमाको दिन पार्वतीको प्रीतिका निमित्त जुन नारीले स्नान, उपवास, पूजा आदि गर्छिन्, त्यसको फल एकाग्रचित्त भएर सुन्नुहोस्। ती नारी स्नानमात्रै गर्दा पनि सम्पूर्ण पापबाट मुक्त हुन्छिन् ॥७९–८०॥

४६. दृष्ट्वा तां मुमुहुर्मुहुः, इति न.सं.पु.पाठः।
४७. सोमाङ्घ्रि सेवयन्मुदा, इति न.सं.पु.पाठः।
४८. अतिप्रिया पतेः, इति न.सं.पु.पाठः।
४९. कल्पकोटिम्, इति न.सं.पु.पाठः।
५०. प्राधान्या चाबलानां सा पतिप्रियहितैषिका, इति न.सं.पु.पाठः।
५१. सर्वपापैर्विवर्जिता, इति न.सं.पु.पाठः।

सुखं पतिव्रता दानादिह लोके परत्र च। गुणरूपसमायुक्ता पतिप्रिया सुतान्विता ॥८१॥
धनधान्यसमायुक्ता दासीदासप्रसेविता। सर्वभोग्यान् मुदा भोक्त्री भवेद् भूमौ हि दानतः ॥८२॥
तेजसाऽऽढ्या सोपवासा[५२] दिव्याङ्गनोपमा सदा। सर्वलक्षणसंयुक्ता सर्वासां सुन्दरी भवेत् ॥८३॥
गीतस्वररसोपेता सर्वलोकमुदावहा। प्रियंवदा मनःस्वच्छा देव्या भक्तिषु तत्परा ॥८४॥
अर्चनात्सा भवेद्देव्याः सर्वसौभाग्यसंयुता। देहान्ते सा ततो विप्र यमिच्छति तमाप्नुयात् ॥८५॥
सूर्यायुतप्रतीकाशविमानेन मुदाऽन्विता। सा व्रजति ह्युमालोकं सर्वलोकात्सुदुर्लभम् ॥८६॥
कल्पकोटिशतं दिव्यं वसेत्तत्र मुदा[५३] च सा। सेवमाना ह्युमादेव्याः पादाब्जे सर्वसर्वदे[५४] ॥८७॥
एतत्कृत्यानि सर्वाणि यावज्जीवं करोति या। मासे मासे यथोक्तानि तस्याः पुण्यफलं शृणु ॥८८॥
भ्रूणहत्यादिभिः पापैः पूर्वजन्मकृतैरपि। सहस्रजन्मजैर्घोरैर्मुच्यते तत्क्षणाद्धि सा ॥८९॥
यदीच्छितं हृदा कामं तत्सर्वं लभते[५५] ध्रुवम्। एकहायनमात्रेण व्रतमेतद् विधाय सा[५६] ॥९०॥
सूर्य्यायुतप्रतीकाशे याने सुबहुतेजसि। रुद्रकन्यासमाकीर्णे चाऽप्सरोगणसेविते ॥९१॥
गीतवाद्यमहोल्लासे धूयमाने च चामरैः। गणैरारोप्य शम्भोः सा नीयते[५७] चाऽम्बरे मुदा ॥९२॥
नीयमाने ततो नाके देवाङ्गनास्तथाऽमराः। वदेयुर्धन्यधन्येति[५८] तामालोक्य मुहुर्मुहुः ॥९३॥
उमालोकं ततो गत्वा वसेत्तत्र महासुखम्। कल्पकोटिशतं दिव्यमुमाङ्घ्रिसेवने रता[५९] ॥९४॥
कालान्ते च ततो भूयो मेदिन्यां जायते हि सा। भूत्वा च पद्मिनी स्त्रीणां सुन्दरी नृपवल्लभा ॥९५॥

---

ती नारी दान गर्नाले सुखी र पतिव्रता हुन्छिन्। यो लोक र परलोकमा समेत रूप, गुण र पुत्रले युक्त भएर पतिकी प्रिय बन्छिन्। ती धन र धान्यले परिपूर्ण हुन्छिन्। दास र दासीहरूले तिनको सेवा गर्छन्। दानको प्रभावले गर्दा पृथ्वीमा भएका सबै कुराको भोग गर्न पाउँछिन्। उनी तेजले युक्त भएकी, व्रत र उपवास बस्नाले सधैं स्वर्गकी अप्सराजस्ती सर्वलक्षणले सम्पन्न सबै स्त्रीहरूमा दिव्यमूर्ति भएकी सुन्दरी हुन्छिन्। गीत, स्वर र रसले युक्त भएकी ती नारी सबैलाई आनन्द दिने, प्यारो बोल्ने, मन शुद्ध भएकी र सधैं देवीको भक्तिमा लीन हुने खालकी हुन्छिन्। ती नारी देवीको पूजा गर्नाले सबै सुख र सौभाग्यवती हुन्छिन्। हे अगस्त्य मुनि ! अन्त्यमा ती नारीले जे चिताउँछिन्, त्यही फल पाउँछिन् ॥८१-८५॥

हे अगस्त्य मुनि ! त्यसरी व्रत, उपवास बस्ने नारी मरेपछि दश हजार सूर्यको जस्तै तेजिलो विमानमा आनन्दसित बसेर अरू सबै लोकभन्दा अत्यन्त दुर्लभ उमालोकमा बस्न जान्छिन्। त्यहाँ दिव्य सय करोड कल्प वर्षसम्म सबैको कल्याण गर्ने उमादेवीको पाउमा सेवा गरेर ती आनन्दसित बस्छिन्। यहाँ बताएका सबै कृत्यहरू जुन नारीले जीवनभर महिनैपिच्छे विधिपूर्वक गर्छिन्, हे अगस्त्य मुनि ! तिनले पाउने पुण्य फल सुन्नुहोस्। ती नारी हजारौं वर्ष अघिदेखि जन्म-जन्मान्तरमा गर्दै आएका भ्रूणहत्या आदि पापबाट तुरुन्तु मुक्त हुन्छिन् र हजारौं जन्ममा गरेका डरलाग्दा पापबाट पनि तिनले मुक्ति पाउँछिन्। कुनै नारीले एक वर्षमात्रै पनि यस्तो व्रत गर्छिन् भने मनले चिताएको सबै कुरा तुरुन्त पाउँछिन् ॥८६-९०॥

सूर्यजस्तो धेरै तेजले युक्त भएको, रुद्रकन्याहरूले व्याप्त, अप्सराहरूले सुशोभित, गीत, बाजा र उत्सवले परिपूर्ण यानमा तिनलाई राखेर आकाशमार्गद्वारा आनन्दसित शिवजीका गणहरूले लैजान्छन्। आकाशमार्गबाट लैजान थालेपछि देवताका स्त्री र देवताहरूले तिनलाई देखेर बारम्बार धन्य धन्य भन्छन्। त्यसपछि उनी उमाको लोकमा गएर उमाको चरणकमलको सेवा गर्दै आनन्दसित दिव्य करोडौं सय कल्पसम्म बस्छिन्।समय पुगेपछि फेरि ती नारी नारीहरूमा पद्मिनीवर्गकी सुन्दरी तथा रानी बनेर पृथ्वीमा जन्मन्छिन् ॥९१-९५॥

---

५२. व्रतोप्रोष्या, इति न.सं.पु.पाठः।
५३. तत्र वसेन्मुदा, इति न.सं.पु.पाठः।
५४. सेवयन्ती ह्युमादेव्याः पापाब्जौ सर्वसर्वदौ, इति न.सं.पु.पाठः।
५५. लभ्यते, इति न.सं.पु.पाठः।
५६. चैतद्व्रतकृतेन वै, इति न.सं.पुपाठः।
५७. तमारोप्य गणैः शम्भोर्नीयते, इति न.सं.पु.पाठः।
५८. धन्याधन्येति वादिन्यः, इति न.सं.पु.पाठः।
५९. दिव्यमुमाङ्घ्र्यब्जौ प्रसेवयन्, इति न.सं.पु.पाठः।

ज्ञानशुद्धा च या नारी पौरुषं देहमिच्छति[६०]। स्नानदानोपवासाच्चेत्समाचरति तद्धदा ॥९६॥
कालान्ते सापि मेदिन्यां जायते हि महान्नृपः। सार्वभौमो महात्यागी जेता पुत्रान्वितो भवेत् ॥९७॥
इत्येवं कथितो धीमन् स्त्रीणां धर्मो हि[६१] सूक्ष्मतः। विधानं शृणु वक्ष्यामि येन लभ्यं च लभ्यते ॥९८॥
देवैर्भुक्तञ्च पूर्वाह्णे मध्याह्ने ऋषिभिस्तथा। पितृभिरपराह्णे च सन्ध्यायां[६२] गुह्यकादिभिः ॥९९॥
सर्ववेलामतिक्रम्य नक्तमुत्तमभोजनम्। स्त्रीपुंसां श्रद्धया शस्तं व्रतिनाञ्च विशेषतः ॥१००॥
क्षमा सत्यं दया दानं शौचमिन्द्रियनिग्रहः। शिवपूजाग्निहोमश्च सन्तोषाश्रयभावना ॥१०१॥
सर्वव्रतेष्वयं धर्मः श्रद्धापूर्वं विशेषतः। श्रद्धया गम्यते तीर्थं श्रद्धया स्नायतेऽप्सु वै ॥१०२॥
श्रद्धया दीयते दानं श्रद्धया हूयते हविः। श्रद्धया जप्यते मन्त्रः[६३] श्रद्धया ध्यायते शिवः ॥१०३॥
श्रद्धया लभ्यते धर्मः श्रद्धया लभ्यते फलम्। क्रोधेनाश्रद्धया यच्च क्रियते कर्म मानुषैः ॥१०४॥
विलीयते च तत्सर्वं भस्मनीव यथा हुतम्। नास्ति धर्म्मसमो मन्त्रो[६४] नास्ति दानसमा गतिः ॥१०५॥
नास्ति रुद्रसमो देवो नास्ति मोक्षसमं सुखम् ॥१०६॥

स्त्रीणां परं धर्मफलाढ्यमेतज्जानीहि विप्रेश सदाचरेद् या।
तुरीयवर्गोत्तमसम्प्रदायं प्राप्नोति[६५] किं श्रोतुमना ह्यसि त्वम् ॥१०७॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे उमाव्रतमाहात्म्यं नामोनचत्वारिंशोऽध्यायः ॥३९॥

---

ज्ञानले शुद्ध भएर जुन नारीले राम्रो चित्त लगाई दान, उपवास, पूजा आदिद्वारा देवीको आराधना गरेर पुरुष बन्ने इच्छा गर्छिन्, ती नारी कालान्तरमा गएर यस पृथ्वीमा पुरुष भएर जन्मन्छिन्। विख्यात पुत्रले युक्त महादानी जयश्रीद्वारा अलङ्कृत चक्रवर्ती राजा बन्छिन् ॥९६-९७॥

हे अगस्त्य मुनि ! यो मैले स्त्रीजातिहरूको धर्मलाई सूक्ष्मरूपमा बताएँ, अब त्यसको विधान बताउँछु। त्यस विधान अनुसार गर्दा उपलब्ध हुने फलहरू राम्ररी सुन्नुहोस्। देवताहरू पूर्वाह्नमा, ऋषिहरू मध्याह्नमा, पितृहरू अपराह्नमा र गन्धर्वहरू साँझमा भोजन गर्छन्। त्यसैले नियममा बस्ने स्त्रीपुरुषहरूले माथि भनेको बेला नाघेपछि बेलुका एक छाक खानु उत्तम भोजन मानिन्छ। क्षमा, सत्य, दया, दान, शौच, इन्द्रियनिग्रह, शिवपूजा, अग्नि, होम र सन्तोष सबै व्रतमा नभई नहुने धर्म हुन्। श्रद्धाले नै तीर्थमा गइन्छ, श्रद्धाले नै जलमा स्नान गरिन्छ, श्रद्धापूर्वक गरेको कर्म नै धर्म मानिन्छ ॥९८-१०२॥

श्रद्धाले नै दान दिइन्छ, श्रद्धाले नै अग्निमा होम गरिन्छ, श्रद्धाले नै मन्त्र जपिन्छ, श्रद्धाले नै शिवजीको ध्यान गरिन्छ। श्रद्धाले नै धर्मको प्राप्ति हुन्छ, श्रद्धाबाटै त्यसको फल पाइन्छ। रिसाएर अथवा श्रद्धा नभईकन मानिसले जुन काम गर्छ, त्यो काम खरानीमा होम गरेजस्तो हुन्छ। धर्मजस्तो ठूलो मन्त्र छैन, दानजस्तो ठूलो गति छैन, रुद्रजस्तो अर्को देवता छैन र मोक्षजस्तो अर्को सुख छैन ॥१०४-१०६॥

हे अगस्त्य मुनि ! स्त्रीजातिहरूको हितका निमित्त मैले बताएअनुसारका तिथि, पर्वमा व्रत गरेमा परमधर्मको फल प्राप्त हुन्छ भन्ने जान्नुहोस्। यसैबाट मोक्षरूपी फल पनि प्राप्त हुन्छ, अब तपाईं के कुरा सुन्ने इच्छा छ, भन्नुहोस् ॥१०७॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गत हिमवत्खण्डको
भगवती गौरीद्वारा अनुष्ठित व्रत र उपवासको महिमानामक
उनन्चालिसौं अध्याय पूर्ण भयो।

---

६०. पुरुषदेहमिच्छति, इति न.सं.पु.पाठः। ६१. इत्येतत्कथितं धीमन् स्त्रीणां धर्माणि, इति न.सं.पु.पाठः। ६२. सन्ध्याम्, इति न.सं.पु.पाठः।
६३. मन्त्रम्, इति न.सं.पु.पाठः। ६४. मन्त्रम्, इति न.सं.पु.पाठः। ६५. पुनश्च, इति न.सं.पु.पाठः।

# चत्वारिंशत्तमोऽध्यायः

## कौशिकीनद्या आविर्भावः

अगस्त्य उवाच

उमाव्रते विधानञ्च व्रतानामुत्तमं फलम्[1] । नारीणाञ्चैव कर्तव्यं[2] त्वत्प्रसादाच्छ्रुतं विभो ॥१॥
भूयः श्रोतुञ्च वाञ्छामि त्वत्तो रुद्रप्रियाऽधुना । कौशिक्याश्चैव गण्डक्याः प्रोद्भवं विस्तरं यथा ॥२॥
सप्तधाराः कथं तासां सप्त धाराः पुनस्तथा । बभूवुस्ता महासेन कस्मात्कस्मात्प्रनिस्सृताः ॥३॥
तस्याः व्रतञ्च विस्तारं तासु स्नानफलानि च । एतत् सर्वं विजानाति भवान् मां वद तत्त्वतः[3] ॥४॥

कार्तिकेय उवाच

शृणु तद्वर्णयामस्ते पञ्चाग्निनाम सुव्रतम् । हिमालये श्रुतं पूर्वं रुद्रमुखादुमाव्रतम् ॥५॥
ज्येष्ठे मासि सिते पक्षे तृतीयायां महाव्रतम् । ज्येष्ठर्क्षसंयुतायां सा व्रतं दध्रे[4] महामनाः ॥६॥
पूर्वोत्तरे समीपे सा नीलकण्ठस्य संस्थिता । चतुर्दिक्षु समाकारं कृत्वा कुण्डचतुष्टयम्[5] ॥७॥
पूर्वकुण्डे प्रदीपं सा प्रजज्वाल महोज्ज्वलम् । दक्षिणे च ततः कुण्डे वह्निं प्राज्वालयन्मुदा ॥८॥
चोत्तरे सा ततः कुण्डे गायन्त्यज्वालयच्छुचिम्[6] । गायन्ती वारुणं कुण्डं ह्यपूरयज्जलेन सा ॥९॥
तेषां मध्ये स्वयं स्थित्वा प्राङ्मुखा सखीभिः समम् । ऊर्ध्वं तेजस्विनं सूर्यं ददर्श गीतितत्परा[7] ॥१०॥
प्रापूजद्विधिवद् भक्त्या पञ्चोपचारकैश्च तान् । दीपानलजलादित्यान् गायन्ती क्रमशो मुदा[8] ॥११॥

---

## अध्याय- ४०

## कौशिकीनदीको आविर्भाव

अगस्त्य मुनिले भन्नुभयो – हे कार्तिक स्वामी ! तपाईंको कृपाले उमाव्रत गर्नुपर्ने विधिविधान, तिनको उत्तम फल र स्त्रीजातिको महाधर्म सुनें। हे रुद्रप्रिय कार्तिक स्वामी ! अब तपाईंबाट कौशिकी र गण्डकीको उत्पत्तिका बारेमा विस्तारपूर्वक सुन्न चाहन्छु। ती नदीहरू कसरी सात-सात धारा भएर प्रकट भए ? हे कार्तिक स्वामी ! तिनको उत्पत्ति कसरी भयो ? तिनको व्रत तथा त्यहाँ स्नान गर्नाले के फल प्राप्त हुन्छ ? तपाईं सर्वज्ञ हुनुहुन्छ, विस्तारपूर्वक मलाई बताइदिनुहोस् ॥१-४॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! मैले रुद्रको मुखबाट अघि हिमालयमा उमाले गर्नुभएको पञ्चाग्निताप नाम गरेको अति उत्तम व्रतको बारेमा सुनेको थिएँ, त्यो बताउँछु, सुन्नुहोस् । ज्येष्ठा नक्षत्रले युक्त भएको जेठ महिनाको शुक्लपक्षको तृतीया तिथिमा गरिने ठूलो व्रत छ, त्यो व्रत महामना पार्वतीले लिनुभएको थियो। नीलकण्ठको नजिकै पूर्व र उत्तर दिशामा चारवटा उत्रै उत्रा कुण्ड बनाई पार्वतीले पूर्वकुण्डमा तेजिलो बत्ती बाल्नुभयो, दक्षिणकुण्डमा खुसी हुँदै आगो बाल्नुभयो, उत्तरकुण्डमा गीत गाउँदै आगो बाल्नुभयो, पश्चिमतिरको कुण्डमा पनि गीत गाउँदै पानी भर्नुभयो। ती अग्निहरूको माझमा सङ्गिनीहरूका साथ पूर्व फर्किएर बस्नुभयो। त्यसपछि उहाँले गीत गाउँदै माथितिर रहेका सूर्यलाई हेर्नुभयो। त्यसपछि उहाँले गीत गाउँदै विधिअनुसार पञ्चोपचारविधिले दियो, अग्नि, पानी र सूर्यलाई क्रमैले पूजा गर्नुभयो ॥५-११॥

---

१. तेषाञ्चैव फलोत्तमम्, इति न.सं.पु.पाठः।
२. नारीणाञ्च महाधर्मम्, इति न.सं.पु.पाठः।
३. एतत्सर्वं भवान्वेत्ता मे वदार्य यथाविधि, इति न.सं.पु.पाठः।
४. दधार, इति न.सं.पु.पाठः।
५. निर्माय कुण्डचत्वारि चतुर्दिक्षु समात्मनः, इति न.सं.पु.पाठः।
६. गीतयन्, इति न.सं.पु.पाठः।
७. गीतयन्मुदा, इति न.सं.पु.पाठः।
८. दीपानलजलान् भानुं यथाक्रमेण गीतयन्, इति न.सं.पु.पाठः।

योगासने स्थिता गौरी नासाग्रे सन्निरीक्ष्य वै। निष्पन्दाक्षा बभूवाऽऽर्या किंचिदूर्ध्वानना सती ॥१२॥
दध्यौ स्वयं स्वमात्मानं निर्विकारं निरञ्जनम्। ध्यायमानञ्च देवैः सा हृत्पद्मे हि महोज्ज्वले ॥१३॥
असहत्सा सुतीक्ष्णञ्च भानुभानुमहातपम्। असह्यवर्च्चसं तेषां ज्योतीरूपप्रकाशकम्[९] ॥१४॥
तेपे त्रिप्रहरं यावत्सुकठोरञ्च दुस्सहम्। साऽऽर्या सूर्योदयारभ्य चतुर्थप्रहरावधि ॥१५॥
एवञ्चक्रे चतुर्थाब्दं पञ्चाब्दावधि साम्बिका। पञ्चमाब्दे व्रतं कृत्वा ततश्चोद्यापनोत्सुका ॥१६॥
व्रतं या कुरुते चैवं दशभूतिं लभेत सा। अवैधव्यञ्च सौभाग्यं धनधान्यसुखेप्सितम् ॥१७॥
पुत्रपौत्रादिसद्वृद्धिं कामाज्जन्म महत्कुले। देव्याः कलेवराद् घर्मबिन्दवस्तेऽपतन् तदा[१०] ॥१८॥
सूर्यातपाग्निसम्भूता ह्यापादमस्तकाद् भृशम्। उत्थाय च ततो गौरी गोदानं मुनये[११] ददौ ॥१९॥
हेमकूटे हि तत्पूर्वं कुशिकाय तपस्विने। तस्याः पादतलात्तत्र निदाघबिन्दवोऽपतन् ॥२०॥
ततोऽजनि सरिच्छ्रेष्ठा हेमकूटे तपःस्थले। उवाह सा[१२] सरिच्छ्रेष्ठा पवित्रसलिलावहा[१३] ॥२१॥
ददर्श कुशिकस्तां वै मुदं स प्राप्तवान् मुनिः। सस्नौ तस्यां मुनिर्नद्यां ददौ दानं[१४] यथाविधि ॥२२॥
प्राप्तवांश्च युवावस्थामतिवृद्धोऽपि रूपवान्। सर्वमायाविनिर्मुक्तो जातिस्मरणमाप्तवान् ॥२३॥
दृष्ट्वा रूपं युवानं स्वमतिहर्षितवान् मुनिः। कुशिको लोमहर्षाङ्गश्चकार भक्तितः स्तवम्[१५] ॥२४॥
गौर्याश्च दक्षपादाब्जोद्भवनद्यां[१६] नताननः ॥२५॥

---

योगासनमा स्थित भगवती गौरी नाकको अग्रभागमा दृष्टि स्थिर गराएर मुखमण्डललाई केही उँचो गराउँदै आँखा नझिम्क्याई बसिरहनुभयो। त्यसपछि उहाँले हृदयकमलमा रहेका, देवताद्वारा ध्यान गरिएका, अत्यन्त उज्वल, निर्विकार तथा निरञ्जन आत्मस्वरूपको ध्यान गर्नुभयो। आफैं ज्योतिस्वरूप भएकी पार्वतीले अत्यन्त कठोर तेज भएका सूर्यको तातो तेजलाई सहनुभयो। पार्वतीले सूर्योदयदेखि लिएर चौथो प्रहरसम्म तीन प्रहर सही नसक्ने खालको कठोर तपस्या गर्नुभयो। यसरी चार वर्षसम्म अम्बिकाले व्रत गरेर पाँचौं वर्षमा पनि यस्तै व्रत गरी अन्त्यमा उद्यापन गर्ने विचार गर्नुभयो ॥१२–१६॥

जुन नारीले यस्तो व्रत गर्छिन्, तिनले दश प्रकारका ऐश्वर्य, पतिको साथै सौभाग्य, धन, धान्य, सुख आदि इच्छा लागेको सबै वस्तु पाउँछिन्। उनले छोरा, नाति, समृद्धि र इच्छा लागेका वस्तुहरू पाउँछिन्। उत्तम कुलमा उनको जन्म हुन्छ। यसरी तपस्या गर्दै जाँदा सूर्यको तातो र आगोको तातोले गर्दा शिरदेखि पाउसम्मका अङ्गबाट पसिनाका विन्दुहरू पैदा भए। त्यसपछि पार्वतीले उठेर ऋषिलाई गोदान दिनुभयो ॥१८–१९॥

हेमकूट नाम गरेको पर्वतमा पहिले उहाँले कुशिक नाम गरेका तपस्वीलाई गोदान दिनुभयो। उहाँका गोडाबाट पसिनाका विन्दुहरू झरे। त्यहाँबाट हेमकूट पर्वतको तपस्थलीमा श्रेष्ठ नदी पैदा भइन् र पवित्र निर्मल जलले युक्त भएर बग्न थालिन्। तिनलाई देखेर कुशिक मुनि अत्यन्त खुसी भए। त्यसपछि विधिपूर्वक भक्तिले त्यस नदीमा स्नान गर्नुभयो। अत्यन्त वृद्ध भए तापनि ती ऋषि रूपवान् भए, तन्नेरी बने, सबै मायाजालबाट मुक्त भएका ती ऋषिलाई पूर्वजन्मको सम्झना भयो। आफ्नो जवान अवस्थालाई देखेर कुशिक ऋषि अत्यन्त हर्षित भए। उनले गौरीको दायाँ पाउबाट निस्किएको नदीलाई भक्तिपूर्वक शिर झुकाएर स्तुति गरे ॥२०–२५॥

---

९. ज्योतीरूपेव च स्वयम्, इति न.सं.पु.पाठः।
१०. ह्यजीजनत्, इति न.सं.पु.पाठः।
११. ऋषये, इति न.सं.पु.पाठः।
१२. तत, इति न.सं.पु.पाठः।
१३. पवित्रनिर्मलावहा, इति न.सं.पु.पाठः।
१४. भाक्त्यादाय, इति न.सं.पु.पाठः।
१५. लोमहर्षाङ्गस्तवञ्चकार भक्तितः, इति न.सं.पु.पाठः।
१६. दक्षपादाब्जोद्भवनद्यै, इति न.सं.पु.पाठः।

## कुशिक उवाच

ओं नमः सरिद्वरायै च[१७] तरङ्गिण्यै नमो नमः। उद्भूतगाढपङ्कायै निर्मलाम्भोवहे नमः ॥२६॥
सर्वदेवप्रवन्द्यायै देव्यङ्घ्र्यब्जोद्भवेऽनघे। सर्वलोकपवित्रायै सर्वपूज्ये नमो नमः ॥२७॥
गौरीस्वेदोद्भवायै च सर्वसौभाग्यदायिके। हरिताम्भःप्रवाहिन्यै शीतजले[१८] नमोऽस्तु ते ॥२८॥
भवापवर्गदे देवि भवतारिणि ते नमः। दुरितघ्नि सुभद्रायै भद्रप्रदे नमोऽस्तु ते ॥२९॥
विश्वजासुभृतां हेतोर्जलरूपतया स्थिते। त्रैलोक्यस्य च पावन्यै[१९] विश्ववन्द्ये नमोऽस्तु ते ॥३०॥
सितासिते[२०] तथा रक्तं धूम्रं पीतं हरित्पुनः। स्वच्छं नानाभपानीयं धारयित्र्यै नमो नमः ॥३१॥
मोहाविद्यान्धकाराणां[२१] विनाशिन्यै च जन्मिनाम्। बहुजन्मकृतान् पापान् प्रणाशिन्यै नमो नमः ॥३२॥
सृष्टिस्थितिविनाशेषु[२२] स्वतन्त्रायै सरिद्वरे। ज्ञानदे ज्ञानरूपायै जलमूर्त्यै नमोऽस्तु ते ॥३३॥

## स्कन्द उवाच

श्रुत्वा स्तवं महादेवी महर्षेः कुशिकस्य च। मुनिवाक्कायसम्भूतं[२३] भृशं तस्मै तुतोष सा ॥३४॥
विनिर्ययौ ततो देवी जलमध्यान्मुदाऽन्विता। वरदानाय तस्मै च गृहीत्वा चापरां तनुम् ॥३५॥
व्याचष्ट वचनं तस्मै जलदेवी प्रहर्षिता। अष्टभुजा हरिद्वर्णा सर्वालङ्कारशोभिता ॥३६॥

---

कुशिक मुनिले भन्नुभयो – नदीको अंश लिने, तरङ्ग र प्रशस्त हिलोले युक्त भएकी पाप पखाल्ने हे कौशिकी ! निर्मल जल लिएर बग्ने तपाईंलाई बारम्बार नमस्कार छ। सम्पूर्ण देवताले पनि नमस्कार गरिएकी, देवीको पाउबाट पैदा भएकी, पापरहित, सर्वलोकपवित्र, सर्वपूज्य देवीलाई बारम्बार नमस्कार छ। गौरीको पसिनाबाट पैदा भएकी, सम्पूर्ण सौभाग्यकी दात्री, हरियो जल लिएर बग्ने, ठण्डा जल भएकी हे नदी ! हजुरलाई नमस्कार छ। संसारलाई मोक्ष दिने, संसाररूपी समुद्रबाट तार्ने हजुरलाई नमस्कार छ। दुर्गतिलाई नाश गर्ने, कल्याणमय स्थानमा रहने सुभद्रालाई नमस्कार छ ॥२६–२९॥

विश्वमा पैदा भएका प्राणीहरूको कल्याणका निमित्त जलरूप लिने, त्रैलोक्यलाई पवित्र तुल्याउने, विश्वकी वन्दनीय हे देवी ! हजुरलाई नमस्कार छ। सेतो, कालो, त्यस्तै रातो, धमिलो, पहेँलो, फेरि हरियो, स्वच्छ गरी अनेकथरी कान्ति भएको पानीलाई धारण गर्ने हजुरलाई नमस्कार छ। प्राणीहरूको मोह, अन्धकार र अविद्यालाई नाश गर्ने, धेरै जन्मदखि गर्दै आएका पापलाई विनाश गर्ने देवीलाई बारम्बार नमस्कार छ। सृष्टि, स्थिति र विनाश गर्न स्वतन्त्र भएकी, ज्ञानस्वरूप, ज्ञानदात्री, नदीश्रेष्ठ जलमूर्तिलाई नमस्कार छ ॥२७–३३॥

कार्तिक स्वामीले भन्नुभयो – महर्षि कुशिकको शरीर, मन र वचनबाट पैदा भएको यो स्तुति सुनेर ऋषिप्रति पार्वती अत्यन्त प्रसन्न हुनुभयो। त्यसपछि जलको बीचबाट हर्षित हुँदै ऋषिलाई वरदान दिनका निमित्त पार्वती अर्को रूप लिएर प्रकट हुनुभयो। आठ हात, हरियो वर्ण र सबै गहनाले सुशोभित भएको दोस्रो रूप लिएर प्रकट भएकी जलदेवीले ऋषिलाई वर दिनुभयो ॥३४–३६॥

---

१७. ॐ नमः सरिदंशायै, इति न.सं.पु.पाठः।
१८. शैत्यजले, इति न.सं.पु.पाठः।
१९. त्रैलोक्यानां पवित्रायै, इति न.सं.पु.पाठः।
२०. सितासितौ, इति न.सं.पु.पाठः।
२१. मोहान्धकारविद्यानाम्, इति न.सं.पु.पाठः।
२२. सृष्टिस्थितिविनाशानाम्, इति न.सं.पु.पाठः।
२३. कायमनोवचोद्भूतम्, इति न.सं.पु.पाठः।
२४. प्रसूतात्वम्, इति न.सं.पु.पाठः।
२५. प्रयतां जगत्, इति न.सं.पु.पाठः।

जलदेव्युवाच

वरं वृणीष्व मत्तस्तत्कामदायां मयि ध्रुवम्। यत्त्वं वाञ्छसि दान्तेश ददामि ते न संशयः ॥३७॥
न केवलं नदीमूर्त्तिं मां विद्याद्वरदां हि ते। मुने जगत्प्रसविनीं[२४] जानीहि जगदीश्वरीम्[२५] ॥३८॥

कुशिक उवाच

महादेव्यै ह्यलक्ष्यायै लक्ष्यायै ते नमो नमः[२६]। सृष्टिस्थितिविनाशायै जलमूर्त्यै नमो नमः ॥३९॥
देव्यद्य मे तपोवृक्षाः फलन्ति सुफलानि च। अद्यैव तर्पिता देवाः पितरोऽद्यैव मे पुनः ॥४०॥
अहोभाग्यमहोभाग्यमनाथाय तनुः स्वका[२७]। आविर्भूय यतस्त्वं मे जलमध्ये प्रकाशिता[२८] ॥४१॥
एतन्नद्या च मे नाम्ना[२९] कर्त्तव्यं नामधेयकम्। इति याचे वरं त्वत्तः भूयो लीनस्त्वदङ्घ्रिके[३०] ॥४२॥

जलदेव्युवाच

यद्याचितो[३१] त्वया वत्स वरो[३२] मत्तो यथेप्सितः। निःशेषो[३३] न भवेद्यावत् स[३४] तथाऽस्तु तवाघकः ॥४३॥
कुशिकेन त्वया यस्मात् सेविताऽस्मि[३५] ह्यहं मुदा। तस्मादहं सुताद्यादि कौशिकीति भवामि वै ॥४४॥
ततो लोका वदिष्यन्ति कौशिकीति चराचराः। सप्तधारा भविष्यामि षट्धाराः सन्तु मद्विधाः[३६] ॥४५॥
यत्र यत्र पतिष्यन्ति मत्स्वेदबिन्दवो भुवि। तत्र तत्र नदीभूता भविष्यन्त्यविधानतः ॥४६॥

---

जलदेवीले भन्नुभयो – हे मुनि इच्छानुसार वर दिने सामर्थ्य भएकी मसँग आफ्नो मनले चाहेको वर माग। हे इन्द्रियसंयमी मुनि ! मुनि ! तिमीले जुन वर चाहन्छौ म त्यो अवश्य दिनेछु, यसमा कुनै सन्देह छैन। हे कुशिक मनि ! तिमीले मलाई नदीमूर्तिमात्र नठान अपि तु वरदायिनी जगदम्बा एवं जगदीश्वरी नै भनी मलाई बुझ। ॥३७-३८॥

कुशिकले भन्नुभयो – हे आद्यादेवी ! व्यक्त तथा अव्यक्त स्वरूप भएकी महादेवी ! हजुरलाई बारम्बार नमस्कार छ। सृष्टि, स्थिति र विनाश गर्ने जलमूर्तिलाई नमस्कार छ। हे देवी ! आज मेरो तपस्यारूपी वृक्ष फलले युक्त भएर फलेको छ। मेरा सबै देवताहरू र पितृहरू पनि तृप्त भएका छ। म अनाथको अहोभाग्य रहेछ, अहोभाग्य रहेछ, किनभने तपाईंले पानीको माझबाट निकालेर आफ्नो शरीर मलाई देखाइदिनुभयो। यसैले मेरो कुशिकको नामबाट नै तपाईंको नाम संसारमा प्रसिद्ध होओस्, यही नै म वर माग्छु र अन्त्यमा पनि हजुरकै पाउमा लीन हुन पाऊँ भन्ने वर माग्छु ॥३९-४२॥

जलदेवीले भन्नुभयो – हे बाबु ! तिमीले मसित इच्छा लागेको जुन वर माग्यौ, आजदेखि सम्पूर्ण त्यो वर त्यस्तै हवस् अर्थात् पूर्ण हवस्। जति तिम्रो पाप सञ्चित छ त्यो पनि सम्पूर्ण समाप्त हुनेछ। हे कुशिक ! तिमीले प्रसन्न भएर मेरो आराधना गरेका थियौ, त्यसैले गर्दा हे छोरा ! आजदेखि म कौशिकी नामले प्रसिद्ध हुन्छु। त्यसपछि चर तथा अचर प्राणीहरूले कौशिकी भनेर भन्नेछन्। सात धारा भएर म बग्नेछु। तिनमा छवटा धारा बराबरका हुनेछन्। जहाँ जहाँ मेरा पसिनाका थोपाहरू खस्नेछन् त्यही त्यही ठाउँमा ती पसिनाका थोपा नदी भएर स्वच्छन्द रूपमा बग्नेछन् ॥४३-४६॥

---

२६. ह्यलक्षायै चाद्यायै वै नमः, इति न.सं.पु.पाठः।
२७. अनाथस्य तनुस्वकम्, इति न.सं.पु.पाठः।
२८. जलमध्यात्प्रदर्शिता, इति न.सं.पु.पाठः।
२९. नदीयं मम नाम्ना वै, इति न.सं.पु.पाठः।
३० मे त्वा भूयो लीनं त्वदङ्घ्रिके, इति न.सं.पु.पाठः।
३१. यद्याचितम्, इति न.सं.पु.पाठः।
३२. वरम्, इति न.सं.पु.पाठः।
३३. निःशेषम्, इति न.सं.पु.पाठः।
३४. भवेद्यावत्तथाऽस्तु च, इति न.सं.पु.पाठः।
३५. यस्मात्प्रसेविता, इति न.सं.पु.पाठः।
३६. षड्धाराश्च तथाविधाः, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

इत्युक्त्वा सा तदा तञ्च[३७] तिरोधानं ययौ जले। जलदेवी वरं दत्वा तत्रैव च घटोद्भव ॥४७॥
ततो ददर्श तां गौरीं व्रजन्तीं रत्नशेखरे। सनता सेवितात् स्थानात् पूर्वस्या[३८] हिमवद्गिरौ ॥४८॥
सनत्कुमार आलोक्याऽनुजगाम हिमालयम्। मुनिं सम्पूज्य सा तस्मै परेभ्योऽपि धनं ददौ[३९] ॥४९॥
तत्रैव चापतद् घर्मश्चिवुकाच्च सुनिर्मलः। तस्माच्चैव नदी भूता विपुला[४०] चोर्मिमालिनी ॥५०॥
प्रेक्ष्य नदीञ्च ताम्राभां मुनिः सस्नौ यथाविधि। तुष्टाव तां नदीं मोदात्[४१] वाक्कायमानसैर्भृशम् ॥५१॥
भूयो जगाम सा गौरी हिरण्यशेखरं गिरिम्। अन्वगच्छन्मुनिस्तस्यास्तप्तवान् हि सनातनः ॥५२॥
ददौ दानं समभ्यर्च्च्य तपस्विने व्रतस्थिता। तत्रापतन्निदाघोऽपि तस्याः सृक्किणीतो गिरौ ॥५३॥
उवाहाऽशु सरिद्भूत्वा पीताभा शैलवाहिनी। तस्यां सस्नौ मुनिर्भक्त्या तुष्टाव च मुहुर्मुहुः ॥५४॥
भूयो जगाम सा गौरी व्योमलेहिसुशेखरे[४२]। योऽन्वगच्छद्धि तस्याः स सनन्दनः प्रतप्तवान् ॥५५॥
तस्मै गौरी ददौ दानं समभ्यर्च्य यथाविधि। घर्मोऽपतदपाङ्गाद्धि तस्या भूयः सुनिर्मलः ॥५६॥
भूत्वा सरिन्निदाघः स[४३] उवाह सलिलामला। तुष्टाव च मुनिस्तस्यै स्नात्वा भक्त्या पुनर्मुने ॥५७॥
ततो जगाम सा देवी महाराजतशेखरे। अन्वगच्छन्मुनिस्तस्याः सनच्च यत्र तप्तवान् ॥५८॥
बहुदानं ददौ तस्मै समभ्यर्च्य हि भक्तितः। तस्या घर्मः कपोलाद्वै रक्ताभो निर्मलोत्तमः ॥५९॥

---

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! यति भनेर जलदेवी कुशिक मुनिलाई वरदान दिएर त्यसै जलमा अन्तर्धान हुनुभयो। त्यसपछि जुन हिमालयको पर्वतमा जहाँ सनत्कुमार बस्नुभएको थियो, उहाँले त्यसैको रत्नशिखरमा हिँडिरहेकी पार्वतीलाई देख्नुभयो र सनत्कुमार पनि तिनै गौरीको पछि लाग्नुभयो। पार्वतीले खुसी भएर ती ऋषि र त्यस्तै पछि लाग्ने अरू ऋषिको पनि पूजा, सत्कार गरेर दान दिनुभयो। तिनको चिउँडोबाट निर्मल खालको पसिना बग्यो। त्यसै ठाउँबाट तरङ्गले युक्त भएकी नदी बगिन्। तामाको जस्तो वर्ण भएकी ती नदीलाई देखेर मुनिले त्यहाँ विधिपूर्वक स्नान गरे। त्यसपछि वचन, शरीर र मनले ती ऋषिले प्रसन्न भएर तिनको स्तुति गरे ॥४७–५१॥

त्यसपछि पार्वती फेरि सुनको शिखर भएको पर्वतमा जानुभयो। सनातन नाम गरेका ऋषि उनको पछि लाग्दै गए र त्यहाँ तपस्या गरे। व्रतमा बसेकी पार्वतीले ती ऋषिलाई पूजा गरी दानदक्षिणा दिनुभयो। पार्वतीको ओठको छेउबाट पर्वतमा पसिना खस्यो र तुरुन्तै पहेँलो वर्णको अर्थात् सुनकोशी नदी बनेर पहाडमा बगिन्। ऋषिले उनको बारम्बार स्तुति गर्नुभयो ॥५२–५४॥

फेरि भगवती पार्वती अत्यन्त उच्च शिखर भएको पहाडमा जानुभयो। सनन्दन नाम गरेका तपस्वी उनको पछि लागे। गौरीले विधिपूर्वक उनको सत्कार गरी दानदक्षिणा दिनुभयो। फेरि पार्वतको आँखाको कोशबाट अत्यन्त निर्मल पसिनाको थोपा खस्यो। त्यो निर्मल थोपा पानीको रूपमा परिणत भई नदी बनेर बग्यो। त्यहाँ भक्तिपूर्वक मुनिले स्नान गरे र स्तुति गरे।त्यसपछि पार्वती चाँदीको शिखर भएको पर्वतमा जानुभयो। सनक नाम गरेका तपस्वी उहाँको पछि लागे। पार्वतीले उनलाई भक्तिपूर्वक पूजा गरेर धेरै दान दिनुभयो। उहाँको गालाबाट रातो वर्ण भएको निर्मल पसिनाको थोपा चुहियो ॥५५–५९॥

---

३७. तस्मै, इति न.सं.पु.पाठः।
३८. सनत्कुमारः स्थितो यत्र तत्पूर्वे, इति न.सं.पु.पाठः।
३९. संपूज्य च ददौ दायं तस्मादृपय एव हि॥ इति न.सं.पु.पाठः।
४०. तदपि, इति न.सं.पु.पाठः।
४१. तुष्टव च मुदा तस्या, इति न.सं.पु.पाठः।
४२. अभ्रलेहिसुशेखरे, इति न.सं.पु.पाठः।
४३. भूत्वा सरिन्नदाघस्तत्, इति न.सं.पु.पाठः।

नदीभूता तदा घर्मादुवाह बहुलोर्मिभिः। सस्नौ तस्यां मुनिर्भक्त्या तुष्टाव त्रिविधैर्मुदा ॥६०॥
भूयो जगाम साऽगस्त्य धातुकूटं हि शैलजा। सोऽन्वगच्छन्मुदा तस्याः सनको यत्र तप्तवान् ॥६१॥
ददौ दानं मुदा तस्मै सम्पूज्य भक्तितोऽद्रिजा। अपतदलकाद् घर्मः पुनस्तस्याः सुनिर्मलः ॥६२॥
उवाहाऽशु सरिच्छ्रेष्ठा तद्घर्मश्चोर्म्मिमालिनी। सस्नौ तस्यां मुनिर्भक्त्या तुष्टाव च मुहुर्मुहुः ॥६३॥
भूयोऽगमद्धटोद्भूत दर्भवन्तं सुशेखरम्। कुशिकेन समं गौरी ब्रह्मर्षिर्यत्र तप्तवान् ॥६४॥
ददौ दानं मुदा गौरी तस्मै सम्पूज्य भक्तितः। ललाटादपतद् घर्मस्तस्याः पुनः सुनिर्मलः ॥६५॥
एष भूत्वा सरिद् घर्म उवाह स्वच्छजीवना[४४]। सस्नौ भक्त्या मुनिस्तस्यां तुष्टाव त्रिविधैर्मुदा ॥६६॥
आविर्भूता ततो देवी कौशिक्यां हि पुनस्तदा। वरदानाय लोकानां सर्वसत्त्वहिताय च ॥६७॥

देव्युवाच

शृणु विप्र वरं दास्ये तुभ्यं लोकहिताय च। नाम्ना ते सप्तधाराश्च मे भविष्यन्ति मूर्तयः ॥६८॥
शुभस्रवा च पापघ्नी भद्रावती महाप्रभा। वरदा चैव दुःखघ्नी सप्तैताः सत्यवाहिनी ॥६९॥
सततं सप्त कौशिक्यो वदिष्यन्तीति प्राणिनः[४५]। सप्तधारा भवाम्यद्य षड् धारा[४६] मद्विभूतयः ॥७०॥
दुर्गा नारायणी चण्डी शिवदूती कपर्दिनी। वाराही च शची गौरी कौशिक्यः क्रमशोऽद्रिजाः ॥७१॥
अद्यप्रभृति भो आर्य[४७] चिरञ्जीव्या निरन्तरम्। मम तीरे च कौशिक्या चाऽऽदिलिङ्गं हि सम्भवेत् ॥७२॥

---

त्यसै पसिनाबाट धेरै तरङ्गले युक्त भएको नदी बनेर बग्यो। ऋषिले त्यस नदीमा तीनै किसिमका भक्ति गरेर प्रसन्न हुँदै स्नान गरे र स्तुति गरे। हे अगस्त्य मुनि ! त्यसपछि पार्वती धातुको शिखर भएको पर्वतमा जानुभयो। कुशिक नामका तपस्वी उहाँको पछि लाग्नुभयो। पार्वतीले भक्तिपूर्वक उहाँलाई पूजा गरेर धेरै दान दिनुभयो। त्यहाँ उहाँको केशबाट निर्मल पसिना झर्‍यो। त्यो पसिना तरङ्गयुक्त नदी भएर तुरुन्त बग्यो। त्यस नदीमा ऋषिले भक्तिपूर्वक स्नान गर्नुभयो र बारम्बार स्तुति गर्नुभयो ॥५८-६३॥

त्यसपछि हे अगस्त्य मुनि ! पार्वती कुशिक ऋषिलाई साथमा लिएर ब्रह्मर्षि भएको कुशैकुशले भरिएको शिखरमा जानुभयो जहाँ सनकले तपस्या गरेका थिए। त्यहाँ उहाँले कुशिक मुनिलाई पूजा गरेर भक्तिपूर्वक दान दिनुभयो। उहाँको निधारबाट पसिनाको निर्मल विन्दु झर्‍यो। त्यही पसिना निर्मल जल बनेर नदी भयो। ऋषिले भक्तिपूर्वक त्यहाँ स्नान गर्नुभयो। तीनै किसिमका भक्तिले प्रसन्न हुँदै उहाँले स्तुति गर्नुभयो। त्यसपछि पार्वती कोशीभित्रै दुनियाँलाई वर दिन र सबै प्राणीको हितका लागि प्रकट हुनुभयो ॥६४-६७॥

देवीले भन्नुभयो – हे विप्र ! लोकको हितका निमित्त तिमीलाई वर दिन्छु। तिम्रो नाउँबाट मेरा सात धाराहरू मूर्त रूप लिएर बग्नेछन्। मेरा सात धाराका नाम शुभस्रवा, पापघ्नी, भद्रावती, महाप्रभा, वरदा, दुःखघ्नी र सत्यवाहिनी हुनेछन्। मलाई बारम्बार प्राणीहरूले सप्तकोशी भनेर भन्नेछन्। म सात धाराकी हुनेछु। म बाहेक अरू छ धारा मेरा विभूति हुनेछन्। हे विप्रवर ! शुभस्रवा दुर्गारूपा हुन्, पापघ्नी चण्डीरूपा हुन्, भद्रावती शिवदूतीस्वरूपा हुन्, महाप्रभा कपर्दिनीरूपा हुन्, वरदा वाराहीरूपा हुन्, दुःखघ्नी शचीरूपा हुन् र सत्यवाहिनी गौरीरूपा हुन्। हे कुशिक मुनि ! आजदेखि तिमी धेरै कालसम्म चिरञ्जीवी बन। कौशिकी नदीको तीरमा आदिलिङ्ग हिमस्वरूप भएर रहनेछ ॥६८-७२॥

---

४४. च तद् घर्मो ववाह जलनिर्मला, इति न.सं.पु.पाठः।
४५. जीविनः, इति न.सं.पु.पाठः।
४६. विख्याता, इति न.सं.पु.पाठः।
४७. अद्य प्रभृतिरार्य त्वम्, इति न.सं.पु.पाठः।

गत्वा तत्राशु लिङ्गं त्वं पूजय विविधार्हणैः। मा त्यज्यतां कदापीशः कलौ गूढः तपस्विनाम्[४८] ॥७३॥
शृणु विप्र वरानद्य[४९] स्नातकेभ्यो ददाम्यहम्। मन्मूर्त्तिकौशिकीष्वार्य श्रद्धाभक्तिपुरस्सरम्[५०] ॥७४॥
ये कुर्वन्ति नराः स्नानं देवासुरास्तथापरे[५१]। ते मुच्यन्तां महापापैः सर्वजन्मार्जितैरपि ॥७५॥
व्रजाम्यहञ्च कौशिक्यां समाधायेति मानसे। आगमष्यन्ति ये स्नातुं पथि तेषां फलं शृणु ॥७६॥
सर्वपापैर्विनिर्मुक्ता गमिष्यन्ति दिवं ध्रुवम्। पदे पदेऽश्वमेधानां फलं लब्ध्वा सुनिश्चितम् ॥७७॥

स्कन्द उवाच

इत्युक्त्वा सा तदा देवी तिरोधानं ययौ जले। कुशिकोऽपि ययौ तत्र आदिलिङ्गं हि यत्र च ॥७८॥
ततो देवाः सहन्धर्वाः सिद्धर्षयस्तथा परे[५२]। समागत्य मुदा सस्नुः कौशिकीषु यथाविधि ॥७९॥
ततः शुम्भनिशुम्भौ तौ रक्तबीजो परेऽसुराः। तासु स्नात्वा निधिं दत्त्वा चादिलिङ्गमपूपुजन् ॥८०॥
ईश्वरात्ते वरं लब्ध्वा देवैः सह परस्परम्। युयुधुः सुचिरं कालं ततो देवा निराकृताः ॥८१॥
समालोक्य जगद्धात्री स्थानभ्रष्टान् सुराँस्तदा। तुमुले युधि तान् दैत्यान्निःशेषं निजघान वै ॥८२॥
एतानि तुभ्यं कथितानि[५३] तस्या जन्मानि प्रोक्ता अभिधानवार्ताः[५४]।
श्रुत्वेशवक्त्राद्धि पुरा हिमाद्रौ भूयश्च कस्ते[५५] श्रवणाभिलाषः ॥८३॥

इति श्रीस्कन्दपुराणे हिमवतखण्डे कौशिक्युद्भवो नाम चत्वारिंशत्तमोऽध्यायः ॥४०॥

---

तिमी त्यहाँ तुरुन्त गएर त्यस शिवलिङ्गको विधिपूर्वक पूजा गर। कलिमा गुप्त स्वरूपले रहेको त्यस लिङ्गलाई कहिल्यै छाड्नु हुँदैन। हे कुशिक ! मेरो मूर्तिस्वरूप भएको कोशी नदीमा श्रद्धा, भक्ति र हर्षले स्नान गर्ने व्यक्तिहरूलाई म वर दिन्छु। जुन मानिस, देवता, राक्षस र अरूहरूले पनि स्नान गर्छन्, तिनीहरू सम्पूर्ण जन्ममा उत्पन्न पापबाट मुक्त बनून्। म पनि कोशी नदीमा स्नान गर्न जान्छु भन्ने बाटमा सोचेर जो मानिस स्नान गर्न आउँछन्, तिनको फल सुन। ती मानिस पाइलैपिच्छे अश्वमेध यज्ञको फल प्राप्त गरेर सम्पूर्ण पापबाट मुक्त भई अवश्य स्वर्गलोक जान्छन् ॥७२-७७॥

कार्तिक स्वामीले भन्नुभयो – यति भनेर पार्वती देवी त्यस जलभित्र अन्तर्धान हुनुभयो। कुशिक मुनि पनि जहाँ आदिलिङ्ग थियो, त्यसै ठाउँमा जानुभयो। त्यसपछि देवता, गन्धर्व, सिद्धऋषि त्यस्तै अरूहरूले पनि कोशी नदीमा आएर प्रसन्न हुँदै विधिपूर्वक स्नान गरे। त्यसपछि शुम्भ-निशुम्भ, रक्तबीज तथा अरू राक्षसहरूले ती नदीहरूमा स्नान गरेर सम्पत्ति दिई आदिलिङ्गको पूजा गरे। भगवान् शङ्करबाट वर प्राप्त गरेर देवताहरूसित तिनीहरूले धेरै समयसम्म लडे र देवताहरूलाई हराए। आफ्नो स्थानबाट भ्रष्ट भएका देवताहरूलाई देखेर पार्वतीले युद्धमा सम्पूर्ण दैत्यहरूलाई मार्नुभयो ॥७८-८२॥

हे अगस्त्य मुनि ! कोशी नदीको जन्म भएको विषयमा उहिले हिमालयमा महादेवको मुखबाट मैले सुनेका कथा तपाईंलाई बताएँ। कानलाई पवित्र तुल्याउने अरू के सुन्न इच्छा छ, भन्नुहोस् ॥८३॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गत हिमवतखण्डको कौशिकी नदीको प्रादुर्भावनामक चालिसौं अध्याय पूर्ण भयो।

---

४८. प्रतप्यताम्, इति न.सं.पु.पाठः।
४९. वराण्यद्य, इति न.सं.पु.पाठः।
५०. श्रद्धाभक्तिमुदान्विताः, इति न.सं.पु.पाठः।
५१. तथापराः, इति न.सं.पु.पाठः।
५२. तथापराः, इति न.सं.पु.पाठः।
५३. एतद्धि तुभ्यं कथितञ्च, इति न.सं.पु.पाठः।
५४. कौशिक्यभिधानवार्ता, इति न.सं.पु.पाठः।
५५. भूयः किमस्ति, इति न.सं.पु.पाठः।

# एकचत्वारिंशोऽध्यायः

## गौरीव्रतम्, कौशिकीमहिमा शुम्भनिशुम्भयोर्युद्धाय प्रयाणञ्च

अगस्त्य उवाच

कथं शुम्भनिशुम्भाभ्यां कृतं युद्धं सुरैः समम्। जित्वा च सकलान् देवान् किमकुर्वंश्च दानवाः ॥१॥
कथं सन्तोषितो रुद्रो दानवैस्तैर्भृशं तदा। लब्धरुद्रवरान्[1] दैत्यानञ्च कथं देवी जघान तान् ॥२॥
एतां वार्त्तां त्वया श्रोतुं[2] पुनर्वाञ्छाम्यहं विभो। सर्वज्ञात्मज सेनानीः सर्वज्ञोऽसि न संशयः ॥३॥

स्कन्द उवाच

शृणु विप्र प्रवक्ष्यामि यद्वृत्तान्तं पुराऽभवत्। देवासुरमहायुद्धं सर्वेषां लोमहर्षणम् ॥४॥
शुम्भस्तथा निशुम्भश्च रक्तबीजो महाबलः। कुशिकेन शिवो ध्यात इति कैश्चिदशुश्रुवन्[3] घ ॥५॥
ऐच्छन् तेऽपि तपस्तप्तुं सुकठोरं शिवे मुदा। कश्यपं समपृच्छँस्ते तपःस्थानं च शङ्करम् ॥६॥

कश्यप उवाच

गच्छन्तु भोऽसुराश्चाऽधोभागे हिमवतो गिरेः। तत्राऽऽदिलिङ्गमास्ते तत्[4] द्ध कौशिक्याः सुतटे भुवि ॥७॥
स्नात्वा लिङ्गं समभ्यर्च्य कौशिक्यां यं यमीप्सितम्। कामं तं तं लभेरन् वै[5] गच्छन्तु चेत्स्पृहा च वः ॥८॥

स्कन्द उवाच

कश्यपस्य मुखाच्छ्रुत्वा चाऽऽजग्मुः कौशिकीतटम्। तस्यां स्नात्वाऽऽदिलिङ्गन्ते चाऽनर्चुर्भक्तिपूर्वकम् ॥९॥
ततो जेपुश्च मन्त्राणि दशवर्षशतानि ते। आविर्भूतस्तदा रुद्रो वरं दातुं तपस्यताम्[6] ॥१०॥

---

## अध्याय - ४१

### गौरीव्रत, कौशिकीमहिमा र शुम्भनिशुम्भको युद्धयात्रा

अगस्त्य मुनिले भन्नुभयो – हे कार्तिक स्वामी ! अघि शुम्भ र निशुम्भ दैत्यले देवताहरूसित के-कसरी युद्ध गरे ? अनि दैत्यहरूले देवताहरूलाई जितेर के गरे ? दैत्यहरूले त्यसबेला कसरी भगवान् शङ्करलाई प्रसन्न तुल्याए ? देवीले रुद्रबाट वर पाएका दैत्यहरूलाई कसरी मार्नुभयो ? हे विभो ! यी सम्पूर्ण विषय तत्ववेत्ता तपाईंसित सुन्न चाहन्छु, किनभने तपाईं सर्वज्ञ हुनुहुन्छ, यसमा शङ्का छैन ॥१-३॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! देवता र राक्षसहरूको बीचमा पहिले सबैका निमित्त रोमाञ्चकारी जुन युद्ध भयो त्यस बारे म बताउँछु, सुन्नुहोस्। एकदिन कुशिक ऋषिले शिवजीको तपस्या गर्न लागेको कुरा महाबलि शुम्भ, निशुम्भ र रक्तबीजले कसैको मुखबाट सुने। उनीहरूले पनि शिवजीलाई प्रसन्न पार्ने विचार गरे। महादेवको कठोर तपस्या गर्नका लागि कुन ठाउँ उत्तम छ भनेर उनीहरूले महर्षि कश्यपसँग सोधे ॥४-६॥

कश्यप ऋषिले भन्नुभयो – हे दैत्य हो ! हिमालय पर्वतको तल्लो भागमा कोशीको तटमा आदिलिङ्ग रहेको छ। कोशीमा स्नान गरेर शिवलिङ्गको पूजा गर। त्यसपछि तिमीहरूले जे जे इच्छा लागेको छ, त्यही त्यही पाउनेछौ। तपस्या गर्ने इच्छा छ भने त्यसै ठाउँमा जाओ ॥७-८॥

कार्तिक स्वामीले भन्नुभयो – कश्यपको मुखबाट त्यो कुरा सुनेर दैत्यहरू कोशी नदीको किनारमा आए। त्यहाँ स्नान गरेर तिनीहरूले भक्तिपूर्वक आदिलिङ्ग शिवको पूजा गरे। त्यसपछि एक हजार वर्षसम्म शिवमन्त्र जपे अनि तपस्वी भक्तहरूलाई वर दिनका लागि भगवान् शङ्कर प्रकट हुनुभयो ॥९-१०॥

---

१. रुद्रवरप्रलब्धान् वै, इति न.सं.पु.पाठः।
२. एतद्वार्तां त्वयि श्रोतुम्, इति न.सं.पु.पाठः।
३. शिवस्तप्तः कश्चिन्मुखात्, इति न.सं.पु.पाठः।
४. तत्रादिलिङ्गमास्ते वै, इति न.सं.पु.पाठः।
५. लभेर्युवा, इति न.सं.पु.पाठः।
६. वरदानाय भक्तिनाम्, इति न.सं.पु.पाठः।

रुद्र उवाच

शुम्भनिशुम्भरक्तौजाः ! वरं वृणुत साम्प्रतम्[७] । वरास्ते यदि वो मत्तः काङ्क्षिता मानसा मुदा[८] ॥११॥
दास्ये तानधुना वो हि युष्माकन्तपसा भृशम् । सन्तुष्टोऽहञ्च दैत्येन्द्रा जानीयुर्मां हि कामदम् ॥१२॥

दैत्या ऊचुः

आदिलिङ्गाय देवाय चाऽऽदिरूपेश ते नमः । आत्मस्थाय पराङ्गाय चाऽऽत्मलिङ्गाय वै नमः ॥१३॥
अज्ञानज्ञानसंज्ञाय ज्ञानाङ्गाय नमो नमः । ज्ञानरूपाय रुद्राय ज्ञानरूप नमोऽस्तु ते ॥१४॥
वागीश्वराय वीराय वामदेवाय ते नमः[९] । वायुरूपाय भीमाय नमस्ते वागगोचर[१०] ॥१५॥
ददासि यदि देवेश विभो नो हि वरोत्तमान्[११] । देवासुरैः सगन्धर्वैः पुम्भिरजेयवध्यताम् ॥१६॥
सर्वेशत्वञ्च नो लोकास्तिष्ठन्तु शासनेषु वै । एते वराः शिवाऽस्मभ्यं दीयन्तां भक्तवत्सल ॥१७॥

स्कन्द उवाच

ओमिति च प्रतिश्रुत्य तिरोधानं ययौ शिवः । ततस्ते प्रययुर्नाकं रुद्रवरप्रदर्पिताः ॥१८॥
स्वर्गे प्रलुण्ठितं सर्वं निराकृताः सुरा बलैः[१२] । युद्धे च बलिभिर्दैत्यैः सम्प्रहारविशारदैः ॥१९॥
दिव्यवर्षशतं साग्रं स्वर्गे राज्यञ्चकार वै । दानवैः सह सम्यग् वै भृशं शुम्भो मुदा मुने ॥२०॥
ततो देवाः सगन्धर्वाः भ्रष्टस्थानाः पराजिताः । सम्मन्त्र्य गुरुणा सार्द्धं ब्रह्माणं शरणं ययुः ॥२१॥
न्यवेदयन् ब्रह्मणे ते तेषां चेष्टाः प्रकम्पिताः[१३] । ओजोभिस्तच्छरैर्युद्धे बहुव्रणाङ्किता मुहुः ॥२२॥
समाश्रुत्य च तच्चेष्टां प्रतीकाराय विश्वसृक् । तत्क्षणं हि क्षणं दध्यौ समाश्वास्याऽमरान्मुहुः ॥२३॥

---

रुद्रले भन्नुभयो – हे शुम्भ ! हे निशुम्भ ! हे रक्तबीज ! तिमीहरूलाई जुन वर चाहिएको छ, मसित माग। तिमीहरूको तपस्याबाट म खुसी छु। त्यसैले अहिले नै तिमीहरूलाई वर दिन्छु। हे दैत्यका अधिपति हो तिमीहरूलाई जुन वर चाहिएको छ, मसित माग। तिमीहरूको तपस्याबाट म खुसी छु। त्यसैले अहिले नै तिमीहरूलाई वर दिन्छु। हे दैत्यका अधिपति हो ! तिमीहरूसँग म खुसी छु, इच्छा लागेको वर दिन सक्ने क्षमता ममा छ भन्ने कुरा ठान ॥११–१२॥

दैत्यहरूले भने – आदि स्वरूप भएका आदिलिङ्ग तथा देवस्वरूप हजुरलाई नमस्कार छ। आफैंमा रहेका चराचरको अङ्गस्वरूप भएका आत्मलिङ्गलाई नमस्कार छ। अज्ञान र ज्ञानको संज्ञा भएका ज्ञानका अङ्गलाई बारम्बार नमस्कार छ। ज्ञानरूप भएका ज्ञानदायक रुद्रस्वरूप हे ईश्वर ! हजुरलाई नमस्कार छ। वामदेव, वीर तथा वागीश्वर रूप लिने हजुरलाई नमस्कार छ। वायु र भीमस्वरूप भएका वचनद्वारा अगम्य हजुरलाई नमस्कार छ। हे ईश्वर ! यदि हामीलाई वर दिनुहुन्छ भने देवता, राक्षस, गन्धर्व र अरू पुरुषहरूले जित्न नसकून्। उनीहरूबाट हामीले मर्नु नपरोस्। हे भक्तवत्सल ! शिव ! हामी शासनमा सबै प्राणीहरूका मालिक बनौँ। यदि दिनुहुन्छ भने हामीलाई यिनै वर दिनुहोस् ॥१३–१७॥

कार्तिक स्वामीले भन्नुभयो – हुन्छ भनेर भगवान् शिव अन्तर्धान हुनुभयो। रुद्रको वर प्राप्त गरेर मत्त भएका राक्षसहरू स्वर्ग गए। युद्धमा प्रहार गर्न सिपालु भएका दैत्यहरूको सेनाले देवतालाई स्वर्गबाट हटाएर सबै कुरा लुटे। हे अगस्त्य मुनि ! दिव्य सय वर्षभन्दा पनि बढी दानवहरूका साथमा बसेर शुम्भले स्वर्गमा आनन्दका साथ खूबसित राज्य गर्‍यो। त्यसपछि हार खाएका र आफ्नो स्थान छोड्न बाध्य भएका गन्धर्व तथा देवताहरू बृहस्पतिसँग सल्लाह गरेर ब्रह्माको शरणमा गए। राक्षसका तीखा बाणले युद्धमा घाइते भएका देवताहरूले काँप्दै ती राक्षसहरूले गरेका क्रियाकलापहरू ब्रह्मालाई निवेदन गरे। तिनीहरूको क्रियाकलाप सुनेर देवताहरूलाई बारम्बार आश्वासन दिँदै ब्रह्माजीले त्यसको प्रतीकारका लागि केही समय विचार गर्नुभयो ॥१८–२३॥

---

७. शुम्भनिशुम्भरक्तौजा वृणुध्वं मयि साम्प्रतम्, इति न.सं.पु.पाठः। ८. यदि वराणि वो मत्तः काङ्क्षितानि च मानसैः, इति न.सं.पु.पाठः।
९. वामदेवाय वीराय वागीश्वराय ते नमः, इति न.सं.पु.पाठः। १०. वागगोचर ते नमः, इति न.सं.पु.पाठः।
११. वरोत्तमान् हि नो विभो, इति न.सं.पु.पाठः। १२. निराकृत्यामरान् बलैः, इति न.सं.पु.पाठः।
१३. निवेदयेन्त्यजाय स्म तेषां चेष्टयम् इति न.सं.पु.पाठः।

ब्रह्मोवाच

मा भीयतां सुराश्चाद्य नः प्रतिक्रियते मया। गम्यताममरा:[१४] सार्द्धं हिमवतस्तटोत्तमे ॥२४॥

तत्रामराश्च कौशिक्यां स्नात्वादौ विधिपूर्वकम्। दुर्गामाराधयन्त्वाशु प्रतीकारो भविष्यति ॥२५॥

स्कन्द उवाच

इत्युक्ता प्रययौ ब्रह्मा त्वरितञ्चाऽमरैः समम्। कौशिक्या दक्षिणे तीरे चाऽऽदिलिङ्गे महोज्ज्वले ॥२६॥

ततः स्नात्वा सुराः सर्वे कौशिक्यां जयकामतः। आदिलिङ्गं समानर्चुर्भक्त्या च तुष्टुवुर्मुदा ॥२७॥

ततोऽभ्यर्च्च्य महालिङ्गं देवाः सर्वे ययुस्तटम्। कौशिक्याः स्तुतये भक्त्या तत्पराः[१५] त्वरितं तदा ॥२८॥

गत्वा तस्याः समीपन्ते वाङ्मनस्तनुभिर्मुने। संहताञ्जलयो भक्त्या कौशिकीं[१६] तुष्टुवुर्भृशम् ॥२९॥

देवा ऊचुः

ॐ नमो घर्मजायै तेऽम्भोरूपिण्यै नमो नमः। द्रवीभूतस्वरूपायै पापहन्त्र्यै[१७] नमो नमः ॥३०॥

व्योमस्थायै नमो देव्यै वायुरूपे नमोऽस्तु ते। अपां[१८] देव्यै महादेव्यै तेजोवत्यै नमोऽस्तु ते ॥३१॥

ज्योत्स्नायै क्षितिरूपायै बीजरूपे नमोऽस्तु ते। रसायै रसरूपायै रसप्रदे नमोऽस्तु ते ॥३२॥

औषधायै च भक्ष्यायै भोग्यायै ते नमो नमः। भोक्त्रे च भक्षरूपायै तोषिण्यै ते नमो नः ॥३३॥

अन्तःस्थाने च देहानां बुद्धिरूपे नमोऽस्तु ते। क्रोधरूपे[१९] मनोदेव्यै चित्तरूपे नमोऽस्तु ते ॥३४॥

जीवानां जीवनोत्पत्तिकर्त्र्यै[२०] जीवेश्वरि नमः। जन्मदायै च सर्वेषां प्रपञ्चपालिके[२१] नमः ॥३५॥

---

ब्रह्माजीले भन्नुभयो – हे देवता हो ! नडराओ, म प्रतीकार गर्छु। तिमीहरू हिमालयको उत्तम तटमा मसित हिँड। हे देवता हो ! पहिले विधिपूर्वक कौशिकी नदीको तटमा स्नान गर, त्यसपछि दुर्गाको आराधना गर, तुरुन्त नै प्रतीकार हुनेछ ॥२४-२५॥

कार्तिक स्वामीले भन्नुभयो – त्यति भनेर ब्रह्माजी पनि देवताहरूलाई साथमा लिएर तुरुन्तै अत्यन्त उज्वल आदिलिङ्ग भएको कौशिकी नदीको दाहिने किनारमा जानुभयो। त्यसपछि सबै देवताहरूले विजयको कामना राखी कौशिकी नदीमा स्नान गरे। भक्तिपूर्वक आदिलिङ्गको पूजा गरे र प्रसन्न भएर स्तुति गरे। महालिङ्गको पूजा गरिसकेपछि सबै देवताहरू ती कौशिकी नदीको स्तुतिका लागि तुरुन्त तटमा गए। कोशी नदीको किनारमा गएर तिनीहरूले हात जोड्दै वचन, मन र शरीरले कोशी नदीको खूबसित स्तुति गरे ॥२६-२९॥

देवताहरूले भने – पसिनाबाट पैदा भएकी, जलस्वरूप लिने हजुरलाई बारम्बार नमस्कार छ। तरल स्वभाव भएकी, सबै पाप नाश गर्ने हजुरलाई बारम्बार नमस्कार छ। आकाशमा रहने देवीलाई नमस्कार छ। वायुरूप लिने हे देवी ! हजुरलाई नमस्कार छ। जलको रूप लिने तेजःस्वरूपा महादेवी ! हजुरलाई नमस्कार छ। हे बीजरूपा देवी ! पृथ्वी र कान्तिको रूप लिने हजुरलाई नमस्कार छ। रसको रूप लिने, पृथ्वीस्वरूप भएर रस प्रदान गर्ने हे देवी ! हजुरलाई नमस्कार छ। औषधिस्वरूप भएकी, भक्ष्य तथा भोग्यरूपा हजुरलाई नमस्कार छ। भोक्ता र भक्ष्य रूप लिने तथा तुरुन्त सन्तुष्ट हुने देवी ! हजुरलाई बारम्बार नमस्कार छ। शरीरभित्र रहने बुद्धि रूप भएकी हे देवी ! हजुरलाई नमस्कार छ। क्रोध नै आत्मा भएकी, मन तथा चित्त स्वरूपकी हे देवी ! हजुरलाई नमस्कार छ। प्राणीहरूको जीवनको उद्धार गर्ने हे जीवेश्वरी ! हजुरलाई नमस्कार छ। जञ्जालको जाल फैलाउने, सबै प्राणीकी जन्मदात्री देवीलाई नमस्कार छ ॥३०-३५॥

---

१४. गच्छध्वममराः, इति न.सं.पु.पाठः। १५. तस्यास्ते, इति न.सं.पु.पाठः। १६. कौशिक्यै, इति न.सं.पु.पाठः।
१७. सर्वाघ, इति न.सं.पु.पाठः। १८. अपो, इति न.सं.पु.पाठः। १९. क्रोधात्मने, इति न.सं.पु.पाठः।
२०. जीविनां जीवनोद्भूतकर्त्रे, इति न.सं.पु.पाठः। २१. जञ्जालजालदे, इति न.सं.पु.पाठः।

ध्यानध्येयस्वरूपायै[२२] ध्यातव्यायै नमो नमः। अरूपायै सरूपायै जलमूर्त्यै नमोऽस्तु ते ॥३६॥
रक्ष रक्ष जगद्धात्रि सङ्कटस्थान् स्वसेवकान्। दानवैरर्दितानस्मान् भ्रष्टांस्ते शरणागतान् ॥३७॥

स्कन्द उवाच

इत्याकर्ण्य स्तवं तेषां भयगद्गदविह्वलम्। निर्ययौ सा तदा देवी कौशिक्याश्च सवाहना ॥३८॥
अष्टादशभुजैर्युक्तां सर्वाभरणभूषिताम्। वरदां सर्वलोकानां ददृशुस्तां सुरास्तदा ॥३९॥
ततोऽभ्यर्च्च्य हि तां देवीं नेमुरष्टकलेवरैः। तां परिक्रम्य भक्त्या ते[२३] स्तुतिभिश्च पुनः पुनः ॥४०॥

देव्युवाच

मा त्रस्यन्तु सुरास्तेभ्यः स्वल्पौजोभ्यः कदाचन[२४]। प्रतीकारं करिष्यामि युष्मदुद्धरणाय वै ॥४१॥
दृप्ता रुद्रबलोन्मत्ताः मच्छस्त्राग्निदिधक्षवः। इदानीं तान् हनिष्यामि भुञ्जध्वं स्वर्यथासुखम् ॥४२॥

स्कन्द उवाच

एतस्मिन् समये चारावाजग्मतुर्हिमाचले[२५]। शुम्भनिशुम्भयोर्भृत्यावन्विष्यन्तौ[२६] सुरान् क्षितौ ॥४३॥
ददृशतुश्च तां देवीमष्टादशैर्भुजैर्युताम्। सिंहस्थां सेवितां देवैर्देवसैन्यैश्च संवृताम् ॥४४॥
भाषमाणां[२७] मिथो देवैस्तेभ्यश्च ददतीं वरान्। स्तोत्रैरभयदां तुष्टां कौशिक्याश्चाऽन्तिकाचले ॥४५॥
आजग्मतुश्च तां दृष्ट्वा चण्डमुण्डौ च तत्र वै। यत्र शुम्भनिशुम्भौ तौ स्वर्गे[२८] क्षिप्रं महाबलौ ॥४६॥
तावूचतुश्च तद्वार्त्तां ताभ्यां नम्रौ[२९] यथोद्भवाम्। प्रणिपत्याऽसुरश्रेष्ठौ सभायां संस्थितौ मुदा ॥४७॥

---

ध्यानले मात्र स्वरूपलाई चिन्न सकिने, ध्यान गर्न योग्य देवीलाई बारम्बार नमस्कार छ। रूप नभईकन पनि स्वरूप भएकी जलमूर्तिरूपा हजुरलाई नमस्कार छ। हे जगद्धात्रि ! दानवबाट पीडित र राज्यबाट भ्रष्ट भएर शरणमा आएका, सङ्कटमा ग्रस्त तपाईंका सेवक हामीहरूको रक्षा गर्नुहोस्, रक्षा गर्नुहोस् ॥३६-३७॥

कार्तिक स्वामीले भन्नुभयो - भयले गद्गद र विह्वल भएका देवताको स्तुति सुनेर पार्वती वाहनमा चढेर कोशीबाटै निस्कनुभयो। देवताहरूले उहाँलाई अठारवटा हात भएकी, सम्पूर्ण गहना लगाएकी, सम्पूर्ण प्राणीलाई वर दिने देवीका रूपमा देखे। त्यसपछि देवताहरूले ती देवीलाई आठै अङ्गले पूजा गरे,भक्तिपूर्वक परिक्रमा गरे र बारम्बार स्तुति गरे ॥३८-४०॥

देवीले भन्नुभयो - हे देवता हो ! थोरै तेज भएका ती दैत्यहरूसँग डराउनुपर्दैन, तिमीहरूको उद्धारका निमित्त मैले तिनीहरूको प्रतीकार गर्नेछु। रुद्रको बल पाएर उन्मत्त भएर मेरो शस्त्रको आगोद्वारा डढ्न खोजेका ती राक्षसहरूलाई म मारिदिनेछु, तिमीहरूले सुखसित स्वर्गको भोग गर्नेछौ ॥४१-४२॥

कार्तिक स्वामीले भन्नुभयो - यसै समयमा पृथ्वीमा देवताहरूलाई खोज्दै शुम्भ र निशुम्भका सेवक तथा दूतहरू हिमालयमा आए। उनीहरूले देवता र देवताका सेनाहरूले घेरिएकी, सिंहमा चढेकी र अठार हात भएकी ती भगवतीलाई देखे। कोशी नदीको नजिकै रहेको पर्वतमा देवताहरूसित कुराकानी गरिरहेकी र उनीहरूको स्तोत्रबाट प्रसन्न भएर अभय वर दिँदै गरेकी देवीलाई तिनीहरूले देखे। चण्ड र मुण्डले ती देवीलाई देखेर जहाँ महाबलि शुम्भ र निशुम्भ बसेका थिए, त्यही स्वर्गमा तिनीहरू आए। उनीहरूले प्रणाम गरेर भएको वृत्तान्त आनन्दसित सभामा बसेका शुम्भ र निशुम्भलाई बताए ॥४३-४७॥

---

२२. ध्यानध्यायितरूपायै , इति न.सं.पु.पाठः।
२३. परिक्रमैश्च भक्त्या वै , इति न.सं.पु.पाठः।
२४. कदापि न , इति न.सं.पु.पाठः।
२५. चारौ आजग्मतुर्हिमाचले , इति न.सं.पु.पाठः।
२६. भृत्यौ अन्वेषयन् , इति न.सं.पु.पाठः।
२७. भाषयन्तीम् , इति न.सं.पु.पाठः।
२८. स्वर्गम् , इति न.सं.पु.पाठः।
२९. निवेदतः स्म तद्वार्त्तां तौ च , इति न.सं.पु.पाठः।

चण्डमुण्डावूचतुः

दैत्येश्वर महाराज त्वयाऽऽवां प्रेषितौ भुवि। अन्वेषणाय देवानां तद्वार्त्तां शृणु साम्प्रतम् ॥४८॥
देवसैन्यानि सम्भूय कौशिक्याश्च तटाचले। स्तुत्वा तिष्ठन्ति तां[३०] देवीं सिंहस्थां हि शुभाननाम् ॥४९॥
अत्यन्तरूपसंपन्ना बह्वायुधभुजैर्युता। देवैः परिवृता तेभ्यो भाषमाणा[३१] मिथोऽभयम् ॥५०॥

स्कन्द उवाच

श्रुत्वा शुम्भश्च तद्वार्त्तां स्वचारयोर्मुखाच्च्युताम्। द्रुतमियेष तां द्रष्टुं योद्धुं देवैश्च तत्परः ॥५१॥
व्याचष्टे प्रेक्षितुं शुम्भः सुग्रीवं तत्र दानवम्। दूत ! प्रयाहि तां देवीमानयाऽरं मदन्तिकम् ॥५२॥

शुम्भ उवाच

सुग्रीव तत्र गच्छ त्वं देवी यत्र प्रतिष्ठति। मद्वचो वद सम्यक् वै तां च[३२] मधुरयन्मुदा ॥५३॥
सुन्दरी चाऽसि देवि त्वं सर्वलोकेषु नः श्रुतम्। अतोऽहं द्रष्टुकामोऽस्मि त्वमत्राऽऽगच्छ हि द्रुतम् ॥५४॥
एवं तां सान्त्वयन् क्षिप्रं यथागमिष्यति द्रुतम्। करोतु वै तथा कार्यं रत्नैश्च[३३] लोभयँश्च ताम् ॥५५॥
नाऽऽगमिष्यति चेत्साऽत्र देवसैन्यप्रदर्पिता। विमथ्य तरसा सैन्यं बलात्तामानयाऽसुर ॥५६॥
दशकोटिरथैर्युक्तः कोटिकोटिपदातिभिः। सन्नह्य कवचैर्योद्धुं गच्छ सुग्रीव सत्वरम् ॥५७॥

स्कन्द उवाच

ततश्च तत्र सुग्रीवो बहुकोटिबलैर्वृतः। जगाम त्वरितं विप्र कौशिक्यास्तटपर्वतम् ॥५८॥
हिमवतः सुकूटे वै चन्द्रशृङ्गे महोज्ज्वले। उत्तरे धीर कौशिक्या देवसैन्यं ददर्श सः ॥५९॥
ददर्श देवसैन्यं स सर्वतोदिक्कगर्जनम्[३४]। सिंहोपरि स्थितां देवीं देवसैन्यैः समावृताम् ॥६०॥

---

चण्ड र मुण्डले भने – हे दैत्येश्वर ! हे महाराज ! तपाईंले हामीलाई देवताहरूको खोजीका लागि पठाउनुभएको थियो, त्यो वृत्तान्त अब सुन्नुहोस्। देवताको सेना कोशी नदीको तटमा रहेको पर्वतमा एकत्रित भएर राम्रो मुख भएकी र सिंहमाथि बसेकी देवीको स्तुति गरेर बसेको छ। अत्यन्त सुन्दर रूपले युक्त भएकी, धेरै हतियार र हातले सजिएकी ती देवी देवताहरूको बीचमा रहेर उनीहरूलाई अभय दान दिँदै कुरा गरिरहेकी छन् ॥४८-५०॥

कार्तिक स्वामीले भन्नुभयो – आफ्ना दूतहरूको मुखबाट त्यो कुरा सुनेर शुम्भले तुरुन्तै देवताहरूसँग लड्नका लागि गएर देवीलाई हेर्ने विचार गर्‍यो। शुम्भले सुग्रीव नाम गरेको दानवलाई तुरुन्त बोलायो र भन्यो – हे दूत ! तुरुन्त गएर देवीलाई मेरो नजिकै लिएर आइज ॥५१-५२॥

शुम्भले भन्यो – हे सुग्रीव ! जहाँ देवी बसेकी छन्, त्यसै ठाउँमा तिमी जाऊ र मीठो बोलीले प्रसन्न हुँदै मेरो कुरा राम्रोसित तिनलाई बताऊ। हे देवी ! तिमी सुन्दरी छ्यौ भन्ने कुरा सम्पूर्ण लोकबाट हामीले सुनेका छौँ। त्यसैले म हेर्न चाहन्छु, तिमी तुरुन्त यहाँ आऊ। यसरी तिमीले रत्नहरूको लोभ देखाएर फकाई फुल्याई तुरन्त तिनलाई यहाँ जसरी आउँछिन्, त्यसरी नै ल्याउने काम गर। हे असुर ! यदि देवताको सेनाको घमण्ड गरेर ती आइनन् भने तिनलाई जबर्जस्ती घिसारेर बलपूर्वक यहाँ ल्याऊ। हे सुग्रीव ! दश करोड रथ र करोडौँ पैदलयात्री सेना लिएर कवच लगाएर तुरुन्त लड्न जाऊ ॥५३-५७॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! त्यसपछि करोडौँ सैन्य लिएर सुग्रीव नाम गरेको दैत्य कोशी नदीको तटमा रहेको पर्वतमा तुरुन्त गयो। कौशिकी नदीको उत्तरपट्टि हिमालयको चन्द्रशृङ्ग नाम गरेको अत्यन्त उज्यालो पर्वतशिखरमा उसले देवताको सेनालाई देख्यो। त्यसले सिंहमाथि बसेकी देवताका सेनाले घेरिएकी देवीलाई र यताउता गर्जेर हिँड्ने देवताको सेनालाई देख्यो ॥५८-६०॥

---

३०. तिष्ठन्ति स्तोत्रयन्, इति न. सं. पु.पाठः। ३१. भाषयन्ती, इति न.सं.पु.पाठः। ३२. तस्यै, इति न.सं.पु.पाठः।
३३. रत्नानि, इति न.सं.पु.पाठः। ३४. गर्जयन्तमितस्ततः, इति न.सं.पु.पाठः।

तत्र गत्वाऽऽशु सुग्रीवः शरवृष्टिं ववर्ष च। सैन्योपरि च देवानां जलधारामिवाऽम्बुभृत् ॥६१॥
अभूद्युद्धं महाघोरं तुमुलं लोमहर्षणम्। देवानां दानवानाञ्च परस्परं जयैषिणाम् ॥६२॥
रथस्थाश्च रथै जघ्नुः पदातयः पदातिभिः[३५]। वाहकैर्वाहकाः जघ्नुः शस्त्राशस्त्रि परस्परम्[३६] ॥६३॥
अन्धीभूता दिशस्तत्र शरजालैः समन्ततः। नाऽद्राक्षुः शरजालानि शस्त्रप्रहरणानि ते[३७] ॥६४॥
भूयो जघान सुग्रीवः शरैः खड्गप्रहारकैः। विबुधानां सैन्यमध्ये गच्छन् रथेन संयुगे ॥६५॥
दुद्रुवुर्देवसैन्यानि हिमवद्गिरिगह्वरे। तच्छैरर्दितान्याशु त्यक्त्वा युद्धं समन्ततः ॥६६॥
ततः प्राहाऽसुरो देवीं गत्वा तदन्तिकं लघु। शस्त्रास्त्राणि च सन्त्यज्य सुग्रीवो मधुरोक्तिभिः ॥६७॥

सुग्रीव उवाच

अत्राऽहं प्रेषितो देवि शुम्भेन दैत्यतेजसा। शृणु तेन यदुक्तं मे तव हेतोर्वदामि ते ॥६८॥
सुरासुरप्रवन्द्योऽहं त्रैलोक्यक्षोभकस्तथा। दैत्यराजाभिधानं मे सर्वलोकैर्नमस्कृतम् ॥६९॥
देवाः सर्वे नमस्यन्ति नानोपहारपाणयः। मयि ते भक्तिभिर्नित्यं दिग्भ्य आगत्य भीरवः ॥७०॥
विमथ्य तरसा देवान् स्वर्गे राज्यं कृतं मया[३८]। सवासवाश्च दिक्पाला बलेन कलहीकृताः ॥७१॥
त्रैलोक्यसुन्दरी देवी त्वमसीति श्रुतं जनैः। गुणैः शीलैस्तथा रूपैर्मम योग्याऽसि हे प्रिये[३९] ॥७२॥
स्त्रीरत्नं त्वमतो ज्ञात्वा दूतो हि प्रेषितो मया। तव हेतोर्द्रुतं देवि भक्त्याऽऽगच्छाऽत्र चेति वै ॥७३॥
एतानि च महार्हाणि रत्नानि विविधानि च। त्वं गृहाण सुखं देवि भूषणानि यथेप्सितम् ॥७४॥
आगच्छ तानि सङ्गृह्य हे देवि मम सन्निधौ। अत्र प्राप्याऽसुराणां[३९क] त्वं वन्दनीया भविष्यसि ॥७५॥

---

त्यहाँ गएर सुग्रीवले मेघले पानीको वर्षा गरेझैं देवता र सेनाहरूमाथि बाणको वर्षा गऱ्यो। परस्पर जित्ने इच्छा गर्ने देवता र दानवहरूको बीचमा रोमाञ्चकारी एवं डरलाग्दो युद्ध भयो। रथमा बस्नेलाई रथमा बस्नेले, पैदल यात्रीलाई पैदल यात्रीले, वाहनमा बसेकालाई वाहनमा बस्नेले, शस्त्र चलाउनेलाई शस्त्र चलाउनेले युद्धमा परस्पर हानाहान गरे। बाणका समूहले गर्दा सम्पूर्ण दिशा अँध्यारा भए। उनीहरूले शस्त्रका समूह र शस्त्रको प्रक्षेपणलाई पनि देख्न सकेनन्। फेरि सुग्रीवले देवताहरूको बीचमा रथ चढेर गई बाण र तरवारले देवताको सैन्यलाई हिर्कायो। सुग्रीवको बाणबाट पीडित भएका देवताका सेनाहरू युद्ध छोडेर हिमालय पर्वतको गुफातिर भागे। त्यसपछि सुग्रीव नाम गरेको दैत्यले शस्त्रअस्त्रलाई फाल्यो र तुरुन्त देवीको नजिकै गएर मीठो बोलीले भन्न थाल्यो ॥६१-६७॥

सुग्रीवले भन्यो – हे देवी ! तेजस्वी दैत्य शुम्भले यहाँ मलाई पठाउनुभएको हो। उहाँले जे भन्नुभएको छ तिम्रो बारेमा, त्यो बताउँछु, सुन। देवता र राक्षस सबैले मलाई प्रणाम गर्छन्। तीनै लोकलाई म हल्लाउन सक्छु, सम्पूर्ण प्राणीहरूले नमस्कार गरिएको मेरो नाम दैत्यराज हो। देवताहरू डराएर विभिन्न किसिमका उपहारहरू हातमा लिएर भक्तिपूर्वक सधैं विभिन्न दिशाबाट मलाई नमस्कार गर्न आउँछन्। इन्द्रसहित सबै दिक्पालहरूसँग जबर्जस्ती झगडा गरेर तिनलाई निकालिदिएको छु। तिनीहरूलाई अधीनमा राखेर स्वर्गमा राज्य गर्दैछु। हे देवी ! तिमी तीनै लोकमा अति सुन्दरी छ्यौ, गुण, शील र रूपले तिमी मेरा निमित्त योग्य छ्यौ भन्ने कुरा मानिसबाट मैले सुनें। यसैले तिमी स्त्रीरत्न छ्यौ भन्ने थाहा पाएर मैले तिमीलाई लिन दूत पठाएको छु। हे देवी ! भक्तिपूर्वक यहाँ आऊ। हे देवी ! यी विभिन्न किसिमका महँगा रत्नहरू र इच्छा लागेको गहना मैले पठाएको छु। आनन्दसित तिमीले ग्रहण गर्न पाउनेछौ। हे देवी ! ती सबै रत्न, गहना धारण गरेर तिमी मेरो नजिकमा आऊ। मसित आएपछि तिमी राक्षसहरूका सामुन्नेमा वन्दनीय हुनेछ्यौ ॥६८-७५॥

---

३५. रथानथैश्च जघ्नुस्ते पदातींश्च पदातयः, इति न.सं.पु.पाठः।
३६. वाहनैर्वाहनान् युद्धे शस्त्राञ्शस्त्रैः परस्परम्, इति न.सं.पु.पाठः।
३७. शस्त्राक्षेपाणि ते तथा, इति न.सं.पु.पाठः।
३८. कृतोऽस्मि वै, इति न.सं.पु.पाठः।
३९. योग्यमिति प्रिये, इति न.सं.पु.पाठः।
३९क. मया सह प्रगम्यताम्। गत्वा तत्रासुराणां ..., इति न.सं.पु.पाठः।

देव्युवाच

न वक्तव्यं त्वया दूत मां च मिथ्योदितं वचः। मिथ्यां वदति यो मेऽग्रे भवेन्मूढः स[४०] नारकी ॥७६॥

न प्रेक्षे तानि रत्नानि त्वयाऽऽनीतानि यान्यहम्[४१]। सर्वरत्नमयं गेहसहस्रं मम[४२] विद्यते ॥७७॥

त्रैलोक्याधिपतिर्दैत्यो यदि शुम्भो भवेत्प्रभुः। तथापि न गमिष्यामि तत्र दूत कदापि च ॥७८॥

प्रतिज्ञा च कृता दूत पुरा शृणु मयेति च। मां जयिष्यति यो युद्धे भविष्यति स मे पतिः ॥७९॥

युद्धं करोतु शुम्भोऽत्र समागत्य मया सह। जित्वा मामचिरेणाऽसावुद्वहतु मुदा[४३] स्वयम् ॥८०॥

एतद्वार्त्तां समादाय गत्वा तस्मै निवेद्यताम्। यदर्थमागतो हि त्वं तज्ज्ञात्वाऽऽशु प्रगम्यताम् ॥८१॥

सुग्रीव उवाच

अहो मूढतरा बुद्धिः सम्भूता त्वयि मानिनि। यया प्रतारिता त्वं वै सर्वसौभाग्यशर्मसु ॥८२॥

एकेन मन्त्रिणा तस्य चेन्द्रादयो मया युधि। शस्त्रास्त्रक्षेपणैरद्रेर्गह्वरे च पलायिता[४४] ॥८३॥

नहि दृष्टं त्वया देवि चाऽसह्यं युद्धमत्र तैः। ससैन्येन च शुम्भेन शक्तो योद्धुं समञ्च कः ॥८४॥

नाऽऽगच्छस्यादरेण त्वं पश्चाद्बलाद् गमिष्यसि। यदाऽऽगच्छति शुम्भोऽत्र कस्त्राता ते वद ध्रुवम् ॥८५॥

स्कन्द उवाच

इत्युक्त्वा च ततस्तस्यै नाकं दूतो जगाम सः। तद्वार्त्तां कथयामास शुम्भाय तच्च चेष्टितम् ॥८६॥

समाकर्ण्य तदा शुम्भस्तद्वृत्तान्तं स्वदूततः। चुकोप च भृशं तस्यै तत्र योद्धुमियेष च ॥८७॥

तां प्रयुद्धय समानेतुं शुम्भश्च स्वान्तिकं मुने। आज्ञापयत्तदा क्रोधी सैन्येभ्यः संसदि ध्रुवम् ॥८८॥

---

देवीले भन्नुभयो – हे दूत ! मसित तँ यस्तो झूठो कुरा नगर। जसले झूठो बोल्छ, हे मूर्ख ! त्यो नरकमा पर्छ। हे मूर्ख ! तँले ल्याएका रत्न म हेर्दिन किनभने मेरा हजारौँ रत्नैरत्नले भरिभराउ भएका हजारौँ घर छ। हे दूत ! यदि शुम्भ दैत्य तीनै लोकको महाराज भयो भने तापनि म त्यहाँ कुनै हालतमा पनि जान्न। हे दूत ! मैले अघि प्रतिज्ञा गरेको छु, सुन् – जसले मलाई युद्धमा जित्छ त्यही नै मेरो पति हुनेछ। त्यसैले शुम्भ यहाँ आएर मसित युद्ध गरोस्। तुरुन्त मलाई जितेर उसले आफैँ विवाह गरोस्। यही खबर लिएर त्यहाँ जा र त्यही कुरा शुम्भलाई निवेदन गर। जुन कार्यका निमित्त तँ आएको थिइस्, त्यही कुरा बुझेर तुरुन्त गइहाल ॥७६–८१॥

सुग्रीवले भन्यो – हे मानिनी ! तिम्रो सबैको भन्दा मूर्ख बुद्धि रहेछ किनभने सम्पूर्ण सौभाग्य र कल्याणबाट तिमी वञ्चित भयौ। त्यसको एउटै मन्त्री मैले लडाइँमा शस्त्र–अस्त्र फ्याँक्दा इन्द्रआदि गरिएका सबै देवताहरू पर्वतबाट गुफातिर भागेका थिए। हे देवी ! तिमीले शुम्भसितको सहनै नसकिने खालको युद्ध देखेकी छैनौ। सेनाका साथ युद्धतत्पर शुम्भसित को युद्ध गर्न सक्छ ?। यदि अहिले ससम्मान जान्थ्यौ भनेपछि जबर्जस्ती जानुपर्नेछ। जब शुम्भ यहाँ आउनुहुन्छ, त्यसबेला तिम्रो कसले रक्षा गर्छ ? भन ॥८२–८५॥

कार्तिक स्वामीले भन्नुभयो – त्यसपछि त्यो दूत स्वर्ग गयो। त्यसले शुम्भलाई त्यहाँ भएको सबै वृत्तान्त बतायो। आफ्नो दूतबाट त्यो वृत्तान्त सुनेर शुम्भ अत्यन्त क्रुद्ध भयो र देवीसित लड्ने विचार गर्‍यो। हे अगस्त्य मुनि ! क्रुद्ध भएको शुम्भले देवीसित युद्ध गरेर तिनलाई पक्रिएर आफू नजिकै ल्याउन सेनाहरूलाई आज्ञा दियो ॥८६–८८॥

---

४०. मूढो भवेत्स, इति न.सं.पु. पाठः।
४१. मूढ त्वं यानि तानि वै, इति न.सं.पु.पाठः।
४२. सर्वरत्नमयं गेहं सहस्रश्च, इति न.सं.पु. पाठः।
४३. विवाहयतु च, इति न.सं.पु.पाठः।
४४. पलायिताश्च, इति न.सं.पु.पाठः।

शुम्भ उवाच

भो भो दैत्याः महावीरा आरुह्यतां रथेषु वै। सन्नह्यतां हि कवचैर्नानाशस्त्रास्त्रसंयुताः ॥८९॥
निर्गच्छध्वं मया सार्धं नाकलोकात्सवाहनाः। हिमवतस्त्वधोभागे कौशिक्यास्तटपर्वते ॥९०॥
यत्र तिष्ठति सा देवी बहुमानपुरस्सरा। कृत्वा युद्धञ्च तां बद्ध्वा चाऽऽनयामो वयं त्विह ॥९१॥

स्कन्द उवाच

समादिश्याऽऽशु सैन्येभ्यो निर्ययौ स रथेन वै। निशुम्भो रक्तबीजश्च चण्डमुण्डौ तथाऽपरे ॥९२॥
जाम्बूनदमयेनाऽऽशु रथेन सूर्यवर्चसा। धरण्यां शुशुभे शुम्भो ज्येष्ठमासे रविर्यथा ॥९३॥
सुरारिसैन्यैः सहसा च सार्द्धं स कौशिकीतीरगिरौ हि शुम्भः।
स्थितो जगाम द्विज यत्र देवी प्रपूरितक्रोधविमूर्च्छितोऽसौ ॥९४॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे गौरीव्रते कौशिकीमाहात्म्ये
शुम्भनिशुम्भनिर्याणं नामैकचत्वारिंशोऽध्यायः ॥४१॥

---

शुम्भले भन्यो– हे महावीर दैत्य हो ! कवच लगाओ, रथमा चढ, विभिन्न शस्त्र–अस्त्रहरू धारण गर। हिमालयको तल्लो भागमा रहेको कोशी नदीको तीरमा अवस्थित पर्वतमा जानका लागि मसितै वाहनमा चढेर स्वर्गबाट निस्क। जहाँ अत्यन्त घमण्ड लिएर त्यो देवी बसेकी छ, त्यहाँ गएर युद्ध गरेर त्यसलाई बाँधेर हामी लिएर आऔँ ॥८९-९१॥

कार्तिक स्वामीले भन्नुभयो – सेनालाई तुरुन्त आदेश दिएर शुम्भ रथमा चढेर निस्कियो। निशुम्भ, रक्तबीज, चण्ड–मुण्ड र त्यस्तै अरू दैत्यहरू पनि रथ लिएर निस्किए। सुनले बनाएको सूर्यजस्तै चहकिलो रथमा चढेको शुम्भ जेठ महिनामा जसरी सूर्य सुशोभित हुन्छन् त्यस्तै गरी पृथ्वीमा सुशोभित भयो। अतिशय क्रुद्ध भएको त्यो शुम्भ दैत्यसेनालाई साथमा लिएर तुरुन्तै देवी बस्नुभएको कोशीनदीको किनारमा रहेको पर्वततिर गयो ॥९२-९४॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गत हिमवत्खण्डको गौरीव्रत, कौशिकीको माहात्म्य र देवतासित युद्ध गर्न शुम्भनशिुम्भको प्रयाणनामक एकचालिसौं अध्याय पूर्ण भयो।

# द्विचत्वारिंशोऽध्यायः

## भगवतीकृतः शुम्भनिशुम्भवधः

स्कन्द उवाच

शुम्भो ददर्श तां देवीं कुशवदद्रिशेखरे। दिव्याननाञ्च सिंहस्थाञ्चैकाकिनीं महोज्ज्वलाम् ॥१॥
तत्राऽऽगत्य द्रुतं शुम्भो यत्रास्तेऽसुरनाशिनी। आज्ञापयत्तदा भृत्यौ चण्डमुण्डौ महाबलौ ॥२॥

शुम्भ उवाच

चण्डमुण्डौ हि तां देवीं बद्ध्वा चाऽऽनयतं लघु। नागपाशैः समाकृष्य भीषयन्तौ[1] च मानिनीम् ॥३॥
निशुम्भ रक्तबीज त्वं कालकेयाः ससैन्यकाः। गच्छत तत्समीपं वै चाऽऽगच्छामि ततस्त्वहम् ॥४॥

स्कन्द उवाच

तदाज्ञाञ्च समादाय तद्वाहिन्यः समन्ततः। वाद्यकोलाहलैस्तीव्रं तां देवीमभिदुद्रुवुः ॥५॥
चण्डमुण्डौ ततो दैत्यौ देव्याश्चोपरि सत्वरम्। चिक्षिपतुरहेः पाशं गत्वा तदन्तिकं बलात् ॥६॥
दृष्ट्वा देवी तदा दैत्यौ नागपाशसमीरणौ। कोपात्करालवक्त्राऽभूद्रक्तास्या रक्तलोचना ॥७॥
तस्याः प्रतिसृता देहादष्टौ च मातृकास्तदा। दैत्यान् समुद्यता हन्तुं स्वस्वशस्त्रास्त्रसंयुताः ॥८॥
हन्तुं समुद्यतां दृष्ट्वा चण्डमुण्डौ च दानवान्। प्रेषयामासतुर्योधान् ज्यायां सन्धाय वै शरान् ॥९॥
शरवृष्टिं ववर्षाऽऽजौ तासामुपरि सत्वरम्। ववृषुश्च पुनर्योधाः शरान् वाद्यपुरस्सरम्[2] ॥१०॥
अन्धीभूता दिशः सर्वाः कोलाहलमभूत्पुनः। कृष्णा नक्तमिवासारैर्व्यलक्षन्त दिशस्तदा ॥११॥

---

## अध्याय - ४२

### भगवतीद्वारा गरिएको शुम्भ र निशुम्भवधको वर्णन

कार्तिक स्वामीले भन्नुभयो - त्यसपछि शुम्भले कुश भएको पहाडको शिखरमा एक्लै सिंहमा बसेकी, अत्यन्त उज्वल र दिव्य स्वरूप भएकी ती देवीलाई देख्यो। शुम्भ दैत्य, असुरविनाशिनी देवी भएको ठाउँमा तुरुन्त आयो र बलिया चण्ड र मुण्ड नाम गरेका सेवकलाई अह्रायो ॥१-२॥

शुम्भले भन्यो - हे चण्ड ! हे मुण्ड ! अत्यन्त घमण्ड गर्ने त्यस देवीलाई नागपाशले बाँधेर डर देखाउँदै छिट्टै यहाँ ल्याओ। हे निशुम्भ ! हे रक्तबीज ! हे कालकेय सैन्य हो ! पहिले तिमीहरू त्यसको नजिकमा जाओ, त्यसपछि म आउँछु ॥३-४॥

कार्तिक स्वामीले भन्नुभयो - त्यसको आज्ञा पाएर उसका फौजहरू वरिपरि उच्च स्वरले बाजा र ढोल बजाउँदै ती देवीमाथि जाइलागे। त्यसपछि चण्ड र मुण्ड नाम गरेका दैत्यले पनि तुरुन्तै देवीको नजिकै गएर उहाँमाथि बलपूर्वक सर्पको पासो फाले। नागपाश फ्याँक्न लागेका दैत्यलाई देखेर देवीको अनुहार रीसले रातोरातो भयो। उहाँका मुख र आँखा राता वर्णका भएका थिए। उहाँको शरीरबाट आठ मातृकाहरू प्रादुर्भाव भए र आफ्नो-आफ्नो अस्त्र लिएर दैत्यहरूसँग लड्न थाले। लड्न लागेका ती मातृकाहरूलाई देखेर चण्ड र मुण्डले अरू दानवहरूलाई ताँदोमा बाण चढाएर लड्न पठाए। लडाईंमा त्यसले देवसेनाहरूमाथि तुरन्त बाणवृष्टि गर्‍यो। सेनाहरूले बाजा बजाउँदै खूबसित बाणहरू वर्साए। सबै दिशाहरू अँध्यारा भए, फेरि कोलाहल भयो। राति पानी परेर अँध्यारो भएजस्तो गरी दिशाहरू काला भए ॥५-११॥

---

१. नगपाशं समाकृष्य विभीषयँश्च , इति न.सं.पु.पाठः। २. ववर्षुश्च पुनः सैन्या वाद्यान् प्रवादयन् भृशम्, इति न.सं.पु.पाठः।

ततस्ता मातृकाः सर्वाः प्रेक्ष्य चेष्टाः सुरद्विषाम् । द्योतयन्त्यो दिशश्चक्रुः सौरास्त्रैः शरवर्षणम्[३] ॥१२॥
ततो युद्धमभूत्तीव्रं सर्वलोकभयङ्करम् । मातृकादैत्ययोर्द्वन्द्वं परस्परजयैषिणोः ॥१३॥
चण्डमुण्डौ समं सैन्यैस्तत्र दुद्रुवतुः पुनः । रथस्थितौ महादैत्यौ दशकोटिरथैर्वृतौ ॥१४॥
जघ्नतुस्ताश्च बाणौघैः शस्त्रास्त्रैश्च समन्ततः । आग्नेयवारुणास्त्रैश्च मायास्त्रैरन्धकारकैः ॥१५॥
भूयो जघ्नुश्च तद्योधान्[४] युगपत्ताः समन्ततः । व्यनदन्[५] सिंहनादाश्च चोद्दिश्य मातृकाः पुनः ॥१६॥
तत्र नादो भृशञ्चाऽभूद्गजाश्वह्रेषितोद्भवम् । वाद्यानां रथनेमीनां योधानां सर्वभीषणम् ॥१७॥
ततो हि[६] मातृकाः सर्वाश्चाऽमर्षैश्च प्रपूरिताः । स्वैः स्वैः शस्त्रैस्तथास्त्रैश्च जघ्नुर्दैत्यचमूर्भृशम् ॥१८॥
ततः शुम्भो निशुम्भश्च रक्तबीजो महासुरः । अर्दयन्तीः स्वकान् सैन्यान् ददृशुर्मातृका भृशम् ॥१९॥
बहुकोटिरथैर्युक्ता दृष्ट्वा ताश्चाऽभिदुद्रुवुः । वर्षयन्त्यः शरान् युद्धे[७] प्रनिघ्नन्त्य इतस्ततः ॥२०॥
प्रेतसंस्था च चामुण्डा समुत्प्लुत्य युयोध सा । सवाहनासुरान् युद्धे जघान बहुशोऽसिना ॥२१॥
चामुण्डा भीषणास्या च चण्डमुण्डौ न्यपातयत्[८] । रथान् रथेन सम्मर्द्य जघास रथिनोऽसुरान् ॥२२॥
समादाय कराभ्यां सा रथान् वाहाँश्च[९] दानवान् । कोटिकोटिपदातींश्च तदा चिक्षेप तन्मुखे ॥२३॥
माहेश्वरी त्रिशूलेन वृषारूढा च सत्वरा । कोटिकोटिं जघानाऽऽशु चक्रं प्रक्षिप्य सत्वरम् ॥२४॥
कौमारी च मयूरस्था शक्त्या जघान दानवान् । शतकोटीन् सवाहाँश्च शक्तिं क्षिप्त्वा मुहुर्मुहुः[१०] ॥२५॥
इन्द्राणी च गजारूढा वज्रेणाऽऽजौ जघान च । प्रक्षेपयन्ती वज्रं सा[११] शतकोटींश्च दानवान् ॥२६॥

---

त्यसपछि राक्षसहरूको क्रियाकलापलाई देखेर ती मातृकाहरूले पनि दिशाहरूलाई उज्यालो पार्दै सौर अस्त्र र बाणको वर्षा गरे । परस्परमा जित्न चाहने मातृका र दैत्यहरूका बीचमा सबै लोकलाई भयभीत तुल्याउने डरलाग्दो घोर युद्ध भयो । दश करोड रथसैन्यले युक्त भएका, रथमा बसेका चण्ड र मुण्डले देवताका सेनामाथि त्यहाँ हमला गरे । तिनीहरूले त्यहाँ अँध्यारै तुल्याउने अस्त्र-शस्त्र, बाणका समूह, आग्नेयास्त्र, वारुणास्त्र र मायास्त्रले हानाहान गरे । फेरि ती सैन्यहरूले सिंहनाद गर्दै एकैचोटि चारैतिरबाट मातृकाहरूलाई ताकेर हिर्काए । त्यहाँ हात्ती र घोडाको गर्जन, बाजाको, रथका पाङ्ग्राको र योद्धाहरूको भीषण शब्दले गर्दा अत्यन्त ठूलो आवाज निस्कियो । त्यसपछि सबै मातृकाहरूले रिसाएर आ-आफ्ना शस्त्र वा अस्त्रले दैत्यका सेनालाई खूबसित प्रहार गरे ॥१२-१८॥

त्यसपछि शुम्भ, निशुम्भ र रक्तबीजले आफ्ना सेनालाई खूबसित पीडा दिन लागेका मातृकाहरूलाई देखे । करोडौँ रथमा बसेका दैत्यसेनाहरूले यताउति बाण हिर्काउँदै मातृका भएतिर जाइलागे । प्रेतको वाहन भएकी चामुण्डाले उफ्रिएर युद्ध गर्नुभयो । उहाँले तरबार हानेर युद्धमा वाहनैसहितका धेरै राक्षसहरूलाई मार्नुभयो । डरलाग्दो मुख भएकी चामुण्डाले चण्ड र मुण्डलाई रथबाट खसालिदिनुभयो । रथले माडेर रथमा चढ्ने धेरै राक्षसहरूलाई खानुभयो । उहाँले वाहन, रथ, दानव र करोडौँ पैदल सेनालाई हातले समातेर मुखमा हाल्नुभयो ॥१९-२३॥

साँढेमा चढेकी माहेश्वरीले छिटो-छिटो गरी करोडौँ करोड राक्षसहरूलाई चक्र फ्याँकेर मार्नुभयो । मयूरमा चढेकी कौमारीले वाहनले सहित भएका सय करोड राक्षसहरूलाई शक्ति नाम गरेको अस्त्र फ्याँकेर बलपूर्वक मार्नुभयो । हात्तीमाथि चढेकी इन्द्राणीले युद्धमा वज्र हिर्काउनुभयो । फेरि वज्र प्रहार गरेर उहाँले सय करोड दानव मार्नुभयो ॥२४-२६॥

---

३. ववर्षुः शरवर्षाणि सौरस्त्रैर्द्योतयन् दिशः, इति न.सं.पु.पाठः ।
४. तत्सैन्या, इति न.सं.पु.पाठः ।
५. निनदन्, इति न.सं.पु.पाठः ।
६. ततश्च, इति न.सं.पु.पाठः ।
७. वर्षयन् शरजातांस्ते, इति न.सं.पु.पाठः ।
८. निपातितौ, इति न.सं.पु.पाठः ।
९. वाहान् रथाँश्च, इति न.सं.पु.पाठः ।
१०. प्रक्षेपयन्मुहुः, इति न.सं.पु.पाठः ।
११. मुहुः प्रक्षेपयन् वज्रम्, इति न.सं.पु.पाठः ।

वाराही तुण्डघातेन दानवान् महिषस्थिता। क्षिपन्ती सा मुहुश्चक्रं[१२] षष्टिकोटिं जघान च ॥२७॥
नारसिंही च चक्रेण दैत्यान् सिंहप्रगामिनी। नाशयामास तान् सर्वान् पञ्चाशत्कोटिसंख्यकान्[१३] ॥२८॥
चण्डे मुण्डे निपतिते[१४] रक्तबीजो महासुरः। दृष्ट्वा प्रमर्दितान् योधान् चुकोप च भृशं मुने ॥२९॥
भर्त्सयँश्च स्वकं सैन्यमभिदुद्राव तास्तदा। रथादवततारााऽऽशु युद्धाय विरथो भुवि ॥३०॥
युयुधुश्च ततो भूयो मातृकाभिश्च दानवाः। नादयन्तः सिंहनादान् वाद्यवादनपूर्वकम्[१५] ॥३१॥
रक्तबीजो जघानाऽऽशु चाऽऽकर्णोद्धृतपत्रिभिः। सर्वाश्च मातृकास्तूर्णं सहस्रैश्च पृथक् पृथक् ॥३२॥
ततश्च मातृकाः सर्वा जघ्नुस्तान् युगपत्पुनः। विहाय दानवान् जघ्नू रक्तबीजं समन्ततः ॥३३॥
रक्तानि सुस्रुवुर्देहात् मुने तस्य निरन्तरम्[१६]। रक्तबीजो बभौ तीव्रं माधवे किंशुको यथा ॥३४॥
यावन्तः पतितास्तस्य बिन्दवश्च[१७] कलेवरात्। तावन्तो दानवा जाताः पांसुसंख्योद्भवा मुने ॥३५॥
ते युयुधुः समं ताभी रक्तबीजाश्च सायुधाः। तानपि मातृका जघ्नुः शस्त्रास्त्रैश्च मुहुर्मुहुः ॥३६॥
रक्तबीजाः पुनर्जाताः कोटिकोटिसहस्रशः। ते युयुधुः समं ताभिर्जघ्नुर्मिथो भृशं पुनः ॥३७॥
तैरर्दिता भयं प्राप्ताः सर्वाश्च मातृका भृशम्। दृष्ट्वा दैत्याञ्जगद्व्याप्तान् पांसुरक्तोद्भवान्मुने ॥३८॥
तद्दैत्यैरर्दिताः सर्वा मातृकाश्च भयातुराः। विहाय समितिं क्षिप्रं जग्मुर्देव्यास्तदन्तिकम् ॥३९॥
ततः पलायमानाँस्तान् देवी मातृगणान् तदा। दृष्ट्वोवाच च चामुण्डां सत्वरञ्च घटोद्भव ॥४०॥

---

भैँसीमाथि चढेकी वाराहीले चिउँडोले हिर्काएर अनि चक्र फालेर सय करोड राक्षसहरूलाई फेरि मार्नुभयो। सिंहमाथि बसेकी नारसिंहीले चक्र हिर्काएर पचास करोड दानवहरूको नाश गर्नुभयो। हे अगस्त्य मुनि ! चण्ड र मुण्ड पछारिएपछि रक्तबीज नाम गरेको ठूलो दैत्य सेना माडिएको देखेर अत्यन्त रिसायो। आफ्ना सेनाहरूलाई गाली गर्दै रथबाट भूमिमा ओर्लिएर विनारथ लड्नका लागि मातृकाहरू भएतिर दौडियो ॥२७-३०॥

राक्षसहरूले सिंहनाद निकालेर बारम्बार बाजा बजाउँदै मातृकाहरूसँग फेरि युद्ध गरे। कानसम्म बाण खिँचेर रक्तबीज नाम गरेको दैत्यले तुरुन्तै छुट्टाछुट्टै हजार-हजारको सङ्ख्यामा बाण मातृकाहरूमाथि प्रहार गऱ्यो। त्यसपछि सबै मातृकाहरूले एकैचोटि अरू दानवहरूलाई छोडेर चारैतिरबाट रक्तबीजमाथि प्रहार गरे। हे अगस्त्य मुनि ! त्यसपछि रक्तबीजको शरीरबाट बारम्बार रगतहरू बग्न थाले। वैशाख महिनाको पलासको फूलजस्तै रगतले रक्तबीजको शरीर अत्यन्त सुशोभित भयो ॥३१-३४॥

हे अगस्त्य मुनि ! त्यसको शरीरबाट जति रगतका थोपाहरू खसे, धुलाको सङ्ख्या बराबर त्यति नै राक्षसहरू पैदा भए। रक्तबीज दैत्यहरूले हतियार लिएर ती मातृकाहरूसँग युद्ध गरे। मातृकाहरूले पनि शस्त्र र अस्त्रहरूले बारम्बार तिनीहरूमाथि प्रहार गर्नुभयो। फेरि पनि हजारौँ करोडको सङ्ख्यामा रक्तबीज दैत्यहरू पैदा भए, तिनीहरूले मातृकाहरूसित युद्ध गरे। खूबसित परस्परमा बाण हानाहान गरे। संसारलाई नै ढाक्ने गरी धुलामा खसेको रगतबाट पैदा भएका दैत्यहरूले सताउन लागेको देखेर सबै मातृकाहरू डराए। हे अगस्त्य मुनि ! यसरी दैत्यबाट पीडित भएका मातृकाहरू डराउँदै युद्ध छोडेर भगवतीको नजिकमा तुरुन्त गए। हे अगस्त्य मुनि ! यसरी युद्धबाट भाग्न लागेका मातृगणलाई देखेर देवीले तुरुन्त चामुण्डालाई भन्न लाग्नुभयो ॥३५-४०॥

---

१२. मह्वः प्रक्षेपर्यँश्चक्रे इति न.सं.पु.पाठः।
१३. कोटिदानवान् इति न.सं.पु.पाठः।
१४. निपाते च इति न.सं.पु.पाठः।
१५. नादयन् सिंहनादांस्ते वाद्यान् प्रवादयन् मुहुः इति न.सं.पु.पाठः।
१६. ततश्च सुस्रुवू रक्तास्देहात्सततं मुने इति न.सं.पु.पाठः।
१७. रक्तविन्दून् इति न.सं.पु.पाठः।
१८. तस्याम् इति न.सं.पु.पाठः।
१९. तद्रक्तास्ततः इति न.सं.पु.पाठः।

देव्युवाच

विस्तारयाऽऽशु जिह्वां त्वं रसां व्याप्य चतुर्दिशम्। व्यात्तास्या भव चामुण्डे मा कार्यंऽपेक्ष्यते चिरम्॥४१॥
ये युध्यन्त्यसुरास्तस्मिन्[१८] हनिष्यामि च तान् ध्रुवम्। पतितान् पिब बिन्दून् त्वं[१९] ततः सर्वो विनश्यति॥४२॥

स्कन्द उवाच

ततो घटज चामुण्डा जिह्वां तस्तार भूतले। तदाज्ञाञ्च समादाय व्याप्य युद्धक्षितिं[२०] तदा॥४३॥
ततश्च युयुधुर्दैत्यैः समं हि मातृका भृशम्। जघ्नुस्ता मातृकाः शस्त्रै रक्तबीजान् समन्ततः॥४४॥
रक्तबीजं जघानाऽऽशु दुर्गा दुर्गार्त्तिनाशिनी। अपीपिबच्च चामुण्डा रक्तबीजक्षतोद्भवम्॥४५॥
नीरक्तं तं समालोक्य रणमध्ये व्यवस्थितम्। देवी चिच्छेद खड्गेन रक्तबीजस्य कन्धराम्॥४६॥
हाहाकारो ह्यभूच्छब्दो योधानाञ्चैवल पश्यताम्। दृष्ट्वा निपातितं देव्या व्यसुं तत्र रणक्षितौ॥४७॥
रक्तबीजे हते दैत्ये सर्वदेवभयङ्करे। दिक्षु दुद्राव सा सेना[२१] भिन्नसेतुरिवार्णवः॥४८॥
क्रोधेन मूर्च्छितः क्षिप्रं निशुम्भोऽपि महाबली। अभिदुद्राव तां देवीं रथेन त्वरितं ततः॥४९॥
निशुम्भोऽपि जघानाऽऽशु सर्वास्ताश्च पृथक् पृथक्। तामुद्दिश्य शरैस्तीक्ष्णैः सहस्रशः समन्ततः॥५०॥
ततो देवी शरेणाऽऽशु निशुम्भञ्च रथस्थितम्। जघान तमुरोदेशे सोऽप्यपतद्रथाद् भुवि॥५१॥
उत्थाय च रणस्थानान्निशुम्भो निःश्वसन्मुहुः। मातृकाः समभिद्रुत्य खड्गेनाऽऽशु जघान ताः॥५२॥
ततो देवी च तं प्रेक्ष्य शतसूर्यस्य वर्चसा। खड्गेन शितधारेण जघान तस्य कन्धरा॥५३॥
स पपात व्यसुर्भूमौ तं प्रेक्ष्य चासुराः पुनः। तामभिद्रुत्य जघ्नुस्ते युगपत्पत्रिभिर्भृशम्॥५४॥

---

देवीले भन्नुभयो – हे चामुण्डा ! तिमी पृथ्वीलाई नै ढाक्ने गरी चारै दिशासम्म मुख फैलाऊ र रगत खाऊ। यस्तो काममा विलम्ब गर्नु ठीक हुँदैन। यो लडाईंमा जति दैत्यहरू लड्नेछन्, ती सबैलाई म मार्नेछु। तिमीले पनि पछारिएका दैत्यहरूको सबै रगत पान गर। यति गरेपछि सबै दैत्यहरू नाश हुनेछन्॥४१-४२॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! त्यसपछि देवीको निर्देशनअनुसार चामुण्डाले युद्धक्षेत्र ढाक्ने गरी जिब्रो विस्तार गर्नुभयो। त्यसपछि दैत्यहरूका साथ देवी स्वयं लड्नुभयो। उहाँले रक्तबीज दैत्यहरूलाई चारैतिरबाट शस्त्रले प्रहार गर्नुभयो। दुर्ग नाम गरेको दैत्यलाई नाश गर्ने भगवती दुर्गाले रक्तबीजमाथि प्रहार गर्नुभयो। चामुण्डाले रक्तबीजको घाउबाट पैदा भएको रगतलाई पिइदिनुभयो॥४३-४५॥

युद्धको माझमा रहेको त्यो रक्तबीज रगतशून्य भएको देखेर देवीले तरबार हानी त्यसको घाँटी छिनाल्नुभयो। पृथ्वीमा प्राणरहित पारेर देवीले लडाउनुभएको रक्तबीजलाई देखेर सबै दैत्यसेनाहरूको बीचमा ठूलो हाहाकार मच्चियो। सबै देवताहरूमा त्रास पैदा गर्ने रक्तबीज दैत्य मरेपछि बाँध फुटेको पानी जस्तै गरी दैत्यसेनाहरू विभिन्न दिशातिर भागे। अत्यन्त बलशाली निशुम्भ पनि क्रुद्ध हुँदै रथमा चढेर तुरुन्त देवी भएतिर दौडियो। निशुम्भले पनि ती सबै मातृकाहरूलाई ताकेर हजारौं तीखा बाणहरूले चारैतिरबाट हिर्कायो। त्यसपछि देवीले रथमा बसेको निशुम्भको छातीमा बाणले हिर्काउनुभयो। त्यो रथबाट भूमिमा पछारियो। युद्धक्षेत्रबाट उठेर निशुम्भले बारम्बार लामो सास तान्दै मातृकातिर दौडिएर तिनीहरलाई तरबारले हिर्कायो। त्यस दैत्यलाई देखेर देवीले सय वटा सूर्यबराबरको तेज भएको तीखो तरबारले त्यसको घाँटीमा हानेर मार्नुभयो। त्यो दैत्य प्राण छोडेर भूमिमा पछारियो। त्यो देखेर राक्षसहरू दौडिँदै देवी भएतिर गए र एकैचोटि बाणले खूबसित उहाँलाई हिर्काए॥४६-५४॥

---

२०. योधक्षितिम् इति न.सं.पु.पाठः। २१. दुद्राव तद्दिशः सैन्यः इति न.सं.पु.पाठः।

तान् बिभेद च भूयः सा खड्गेनाऽऽपादमस्तकम्। द्विधा द्विधा त्वभूवंस्ते पतिता भुवि सर्वशः।
रसातलात्पुनर्दैत्याश्चोत्थाय छिन्नविग्रहाः ॥५५॥
सुवासोरज्जुभिर्बद्ध्वा युयुधुश्च पुनः क्वचित्। क्वचिच्छिरांसि चाऽऽदाय बद्ध्वा गले पुनः क्षितौ ॥५६॥
युयुधुः खड्गहस्तास्ते कबन्धाः छिन्नकन्धराः। ततो दुर्गा पुनस्तेषां योधानां सायुधान्भुजान् ॥५७॥
भल्लैश्चिच्छेद तूर्णञ्च वज्रेणैव यथा द्रुमाः। तेषां पाणीन् रसायाञ्च छिन्नमूला द्रुमा इव ॥५८॥
ततश्चाऽऽलोक्य तान् शुम्भो देवीं प्रोवाच सत्वरम् ॥५९॥

शुम्भ उवाच

मा गर्वं वह हे देवि ![22] हत्वा क्षुद्रांश्च दानवान्। परसैन्य[23] समाश्रित्य बहुमानिनि युद्धयसे ॥६०॥
स्त्रिया सार्द्धं कथञ्चेति योद्धव्यं समुपस्थितम्। धिगिति च वदिष्यन्ति लोका मां च मुहुर्मुहुः ॥६१॥
त्वं हनिष्यसि चेन्मां वा त्वां हनिष्याम्यहं यदि। न वरं मानिनि लोके सम्प्राप्य लोककुत्सितम् ॥६२॥
स्त्रिया हतञ्च मां लोका वदिष्यन्तीति धिक् च मे। मया त्वं हन्यसे चेद्वा कुत्सितञ्च तथाविधम् ॥६३॥
अहं तथापि युद्धयामि[24] त्वया सहात्र मानिनि। लोकाः स्तुवन्तु निन्दन्तु न प्रेक्षे वा पराङ्मुखम् ॥६४॥
उद्धरिष्यामि तद्वैरं भ्रातृमन्त्रिहतोद्भवम्। बद्ध्वा त्वामानयिष्ये वै हत्वा वा युधि संशये ॥६५॥

दुर्गोवाच

रे रे दैत्य महामूढ कथयसि कथाः इमाः[25]। दर्शयामि बलं तेऽद्य शूरा न बहुभाषिणः ॥६६॥
मां मा जानीहि मूढ त्वं केवलं स्त्रीमिमां तनुम्। कालेऽनया[26] च सर्वं वै हनिष्यामि सृजामि च ॥६७॥
अमूश्च मातृकाः सर्वाः मदंशा मूढ नाऽपराः। आहत्य ता इदानीं त्वां हनिष्येऽहं युधि ध्रुवम् ॥६८॥

---

देवीले पनि तरबारले पाउदेखि शिरसम्म छरिएका दैत्यका बाणहरूलाई दुई-दुई टुक्रा पारिदिनुभयो। ती सबै टुक्रा वरिपरि भूमिमा छरिए। फेरि शरीर काटिएका दैत्यहरू जमिनबाट उठेर राम्रा कपडा र डोरीले आफ्नो शरीरमा काम्रो बाँधी लड्न थाले। कतै कतै घाँटी काटिएका, टाउको नभएका दैत्यहरूले अरूको टाउको घाँटीमा बाँधेर हातमा तरबार लिई पृथ्वीमा फेरि लड्न थाले। त्यसपछि फेरि दुर्गा भगवतीले भालाले लडाकु ती दैत्यहरूका हतियारसहितका हातलाई वज्रले रुखलाई जस्तै गरी तुरुन्त काटिदिनुभयो। जरा काटेको रुखजस्तै गरी तिनीहरूका हात पनि पृथ्वीमा खसेको देखेर शुम्भ दैत्यले हडबडाएर देवीसित भन्यो ॥५६-५९॥

शुम्भले भन्यो – हे घमण्डी देवी ! भुसुनाजस्ता दैत्यहरूलाई अर्काको सहयोग लिएर लडाईंमा मारिस्, धेरै सेखी नगर्। स्वास्नीमानिसको साथमा मजस्ताले कसरी लडाईं गर्नु ? दुनियाँले मलाई बारम्बार धिक्कार दिनेछ भन्ने मेरो मनमा आयो र मात्रै हो। तैँले मलाई मारिस् अथवा मैले तँलाई मारेँ भने पनि हे मानिनी ! दुनियाँले गरेको निन्दा सुनेर निश्चिय नै राम्रो हुँदैन। स्त्रीजातिबाट मरेको मलाई दुनियाँले धिक्कार्नेछ। मैले तँलाई मारेँ भने पनि त्यस्तै गरी दुनियाँले धिक्कार गर्नेछ। तैपनि हे मानिनी ! तँसित यस युद्धमा म लड्ने छु। दुनियाँले प्रशंसा गरोस् वा निन्दा गरोस्, म फर्किएर हेर्दिनँ। भाइ र मन्त्रीहरूलाई मारेको शत्रुताको बदला म लिन्छु। तँलाई बाँधेर ल्याउँछु अथवा युद्धमा मारिदिन्छु ॥६०-६५॥

दुर्गाले भन्नुभयो – हे महामूर्ख दैत्य धेरै कथा भन्छस्, तेरो बल आज देखाइदिन्छु, किनभने वीरले धेरै बोल्दैन। हे मूर्ख मलाई यो शरीर हेरेर खालि स्त्री जाति हो भन्ने नठान्। यही शरीरले समयअनुसार सबैलाई मार्छु र सृष्टि पनि गर्छु। हे मूर्ख ! यी सबै मातृका मेरै अंश हुन्, अरू होइनन्। यिनीहरूलाई आफूमा विलीन गराएर युद्धमा एक्लै अब म तँलाई अवश्य मार्नेछु ॥६६-६८॥

---

२२. वहसेऽत्र त्वम् इति न.सं.पु.पाठः।
२३. परबलान् इति न.सं.पु.पाठः।
२४. तथापि योधयिष्येऽहम् इति न.सं.पु.पाठः।
२५. कथयसे कथान् बहून् इति न.सं.पु.पाठः।
२६. अमुना इति न.सं.पु.पाठः।

स्कन्द उवाच

ततस्ता धीर देव्यङ्गे यथा प्रतिसृताः पुरा। विलीनाश्च बभूवुर्वै सर्वलोकस्य सन्निधौ[२७] ॥६९॥
ततो युद्धमभूद् भूयः सर्वलोकभयङ्करम्। गिरिजाशुम्भयोस्तीव्रं परस्परं जयैषिणोः ॥७०॥
ततः शुम्भो बहून् बाणानाधाय धनुषि ध्रुवम्। ववर्ष शरवर्षञ्च नभः कृष्णं यथा निशि ॥७१॥
अन्धीभूता दिशः सर्वाश्चाऽभूवन् गोचराद् बहिः। रुद्रक्रोधाच्च लोकानां कल्पान्ते च यथा जगत् ॥७२॥
ततो देवी समुद्धूय वायव्यास्त्रैश्च तच्छरान्। प्राद्योतयद्दिशो भूयः सौरबाणैः समन्ततः ॥७३॥
जघान तमुरोदेशे देवी तीक्ष्णैः शरैर्भृशम्। सारथिञ्च शतैर्भित्वा शतैः शतैश्च वाहनान् ॥७४॥
क्रोधेन मूर्छितः शुम्भो देवीबाणैः प्रपीडितः। अक्षेपयदहेः पाशं देवीं बद्धुञ्च सत्वरम् ॥७५॥
प्रबध्य ताञ्च पाशैः स तीक्ष्णजिह्वैर्दृढं तदा। अवतार्य रथात्तूर्णं व्योम समानयत् स ताम् ॥७६॥
देवी स्वबन्धनं प्रेक्ष्य नागपाशैर्नभस्थले। आनयन्तं तदा शुम्भं पाशांश्चिच्छेद चाऽसिना ॥७७॥
तयोर्युद्धमभूद् व्योम्नि दिव्यलोकभयप्रदम्। शस्त्रास्त्रैः सम्प्रहारैश्च निराधारे मुहुर्मुहुः[२८] ॥७८॥
मुष्टिभिश्च तलैश्चैव मल्लयुद्धञ्च चक्रतुः। दिव्यवर्षशतं व्याप्य परस्परं जयैषिणौ ॥७९॥
ततो देवी त्रिशूलेन भित्वा चोरसि तस्य च। तं शतयोजनाद् व्योम्नो वसुधायामपातयत् ॥८०॥
कम्पयन्मेदिनीं सर्वां सशैलवनकाननाम्। व्यसुर्जगाम पातालं शुम्भो भृत्यैः समन्तदा ॥८१॥
सिंहश्च दानवान् शेषान्नखैस्तलैरचूर्णयत्। पातालमपि ते जग्मुर्ल्लाङ्गूलेनाहताः क्वचित् ॥८२॥
ततः काका भुशुण्डी च ह्यवतीर्याऽद्रिशेखरात्। अभूभुजन् हि तान् दैत्यान् पतितांश्च क्षितौ शवान् ॥८३॥

---

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! जसरी तिनीहरू अघि निस्किएका थिए, त्यसरी नै सबै मातृकाहरू प्राणीहरूलाई देखाउँदै देवीकै अङ्गमा विलीन भए। परस्परमा विजयको आकाङ्क्षा राख्ने पार्वती र शुम्भ दैत्यका बीचमा सबै प्राणीहरूलाई त्रास पैदा गर्ने खालको युद्ध भयो। त्यसपछि शुम्भले धनुषमा बाणहरू राखेर वर्षाका कालो रातजस्तै हुने गरी खूबसित बाण वर्षा गर्‍यो। सबै दिशाहरू अँध्यारा भए। कल्पको अन्त्यमा शिवजीको रीसले प्राणीहरूसहित संसार अदृश्य भएजस्तै बाहिर देख्न छोडियो। त्यसपछि देवी प्रकट भएर दैत्यका बाणहरूलाई वायव्यास्त्र र सूर्यसम्बन्धी बाणहरूले दशै दिशा चम्काउनुभयो र शुम्भ दैत्यको छातीमा तीखा बाणहरू प्रहार गर्नुभयो। सय वटा बाणले सारथि र सय वटा बाणले वाहनहरूलाई ध्वस्त पार्नुभयो ॥७३–७४॥

देवीको बाणले पीडित भएर क्रोधले मूर्च्छा परेको शुम्भले देवीलाई बाँध्न तुरुन्त नागपाश फ्याँक्यो। त्यस दैत्यले तीखो जिब्रो भएको नागपाशले देवीलाई बलियोसँग बाँधेर रथबाट तुरुन्त ओराल्यो र आकाशमा लग्यो। नागपाशले आफूलाई बाँधेर आकाशमा ल्याउन लागेको शुम्भलाई देखेर भगवतीले तरबारद्वारा पाश काट्नुभयो। ती दुईका बीच स्वर्गीय प्राणीहरूलाई पनि त्रास पैदा गर्ने खालको युद्ध आकाशमा भयो। निराधार आकाशमा उनीहरूले खूबसित शस्त्र र अस्त्रको प्रहार गरे ॥७५–७८॥

परस्पर विजयको आकाङ्क्षा राख्ने देवी र शुम्भले दिव्य सय वर्षसम्म मुष्टियुद्ध, मल्लयुद्ध र हस्तयुद्ध गरे। त्यसपछि देवीले त्यसको छातीमा त्रिशूलले हिर्काएर त्यसलाई सय योजनमाथिको आकाशबाट पृथ्वीमा खसालिदिनुभयो। पहाड र जङ्गलले सहित भएको पृथ्वीलाई कपाउँदै प्राण गएको शुम्भ भृत्यहरूका साथ पाताल पुग्यो। सिंहले पनि नङ्ग्रा र चपेयले बाँकी रहेका दानवहरूलाई धूलोपिठो पार्‍यो। पुच्छरले हिर्काएर कुनै दैत्यलाई पाताल पुर्‍याइदियो। त्यसपछि काग र भुशुण्डीहरू पहाडको शिखरबाट ओर्लिए। अनि तिनीहरूले भुईंमा पछारिएका ती दैत्यहरूका लाश खाए ॥७९–८३॥

---

२७. सर्वलोकं प्रदर्शयन् इति न.सं.पु.पाठः।
२८. मुहुर्भृशम् इति न.सं.पु.पाठः।

ततः कालान्तरे धीमन् विमुक्तास्ते च दानवाः। देव्याः शस्त्रास्त्रपूताङ्गास्तस्यां लीना हि सर्वशः ॥८४॥
ततो देवाः सगन्धर्वाः सिद्धर्षयो मुदाऽन्विताः। गुहातोऽद्रेः समाजग्मुर्यत्र देवी प्रतिष्ठिता ॥८५॥
तुष्टुवुश्च ततो देवाः देवीं सिंहोपरि स्थिताम्। आधाय स्वाञ्जलिं भक्त्या परिक्रम्य च मूर्द्धसु ॥८६॥

देवा ऊचुः

ॐ नमः प्रणवरूपिण्यै मातृकायै नमो नमः। सर्वौषधात्मरूपिण्यै मातृकायै[२९] नमो नमः ॥८७॥
आत्मस्थायै च सर्वेषामात्मने वै नमो नमः। चिद्रूपिण्यै हृदिस्थायै बुद्धिरूपे नमो नमः ॥८८॥
अभिमानस्वरूपिण्यै सुखात्मने नमो नमः। नमश्चाऽऽनन्दरूपिण्यै मोक्षरूपे नमोऽस्तु ते ॥८९॥
प्रज्ञायै ज्ञानरूपिण्यै ज्ञानाज्ञानात्मने नमः। विवेकिन्यै च भद्रायै चैतन्यायै नमो नमः ॥९०॥
नमो देव्यै महादेव्यै मङ्गलायै नमो नमः। कात्यायन्यै कलाधात्र्यै सर्वपापहरे नमः ॥९१॥
मायायै लोकधात्र्यै ते लोकरञ्जनकारिणि। सर्वपापहरे देवि सर्वदैत्यद्रुहे नमः ॥९२॥
यद्रक्षिता वयं देवि घोरदैत्यबलात् त्वया[३०]। असुराँस्तान् निहत्याऽऽशु तस्यै तुभ्यं नमो नमः ॥९३॥
स्थानभ्रष्टा वयं भूयः शुम्भासुराद् भयङ्करात्। रक्षिताश्च त्वया देवास्तस्यै देव्यै नमो नमः ॥९४॥

देव्युवाच

स्तवैः सन्तोषिताऽहं वो देवा भक्तिभिरीरितैः। वाक्कायमानसोद्भूतैः स्वात्मोद्धरणहेतुभिः ॥९५॥
गच्छत देवता यूयं स्वं स्वं स्थानं सुखं मुदा। भुञ्जध्वं त्रिदिवे राज्यं शत्रुतो विगतज्वराः ॥९६॥

---

हे बुद्धिमान् अगस्त्य मुनि ! कालान्तरमा गएर देवीको शस्त्र र अस्त्रले पवित्र अङ्ग भएको हुँदा ती दानवहरू मुक्त भए, तिनीहरू देवीमा नै लीन भए। त्यसपछि गन्धर्व, देवता, सिद्ध र ऋषिहरू प्रसन्न हुँदै पहाडको गुफाबाट निस्किए र जहाँ देवी रहनुभएको थियो, त्यसै ठाउँमा गए। देवताहरूले सिंहमाथि बसेकी देवीलाई भक्तिपूर्वक परिक्रमा गरी आफ्नो हात शिरमा राखेर स्तुति गरे ॥८४-८६॥

देवताहरूले भने - प्रणवरूप लिनुभएकी मातृकालाई बारम्बार नमस्कार छ। सम्पूर्ण औषधिस्वरूप भएकी मातृकालाई बारम्बार नमस्कार छ। सबैको आत्मामा बस्ने आत्मस्वरूप भएकी भगवतीलाई बारम्बार नमस्कार छ। हृदयमा बस्ने चैतन्यस्वरूप भएकी बुद्धिरूपा देवीलाई बारम्बार नमस्कार छ। अभिमानस्वरूप भएकी सुखरूपा भगवतीलाई बारम्बार नमस्कार छ। मोक्षको रूप लिने भएकी आनन्दस्वरूपा हे देवी ! हजुरलाई नमस्कार छ। ज्ञान र अज्ञान दुबै आत्मा भएकी ज्ञारूपिणी देवीलाई नमस्कार छ। विवेकवती, कल्याणकारिणी र चैतन्यस्वरूपा भगवतीलाई बारम्बार नमस्कार छ। महादेवी भएकी मङ्गला देवीलाई नमस्कार छ। कल्याणदायिनी देवीलाई बारम्बार नमस्कार छ। कात्यायनी, कालधात्री र सबै पापलाई हरण गर्ने देवीलाई नमस्कार छ ॥८७-९१॥

माया रूप लिने, संसारलाई धारण गर्ने, लोकलाई आनन्दित तुल्याउने, सम्पूर्ण प्राणीको पाप हरण गर्ने र सम्पूर्ण दैत्यहरूसँग द्रोह गर्ने हे देवी ! हजुरलाई नमस्कार छ। हे देवी ! राक्षसहरूलाई मारेर डरलाग्दा दैत्यहरूको बल र पराक्रमबाट हजुरले हाम्रो रक्षा गर्नुभयो। त्यस्ती हजुरलाई बारम्बार नमस्कार छ। डरलाग्दो शुम्भ राक्षसले गर्दा हामी आफ्नो स्थानबाट भ्रष्ट भएका थियौँ। तिनीहरूलाई मारेर हजुरले देवताहरूको रक्षा गर्नुभयो त्यस्ती देवीलाई बारम्बार नमस्कार छ ॥९२-९४॥

देवीले भन्नुभयो - हे देवता हो ! आफूलाई उद्धार गरेको हुँदा वचन, शरीर र मनदेखि नै निस्किएका भक्तिमय वाक्यले गरिएको स्तुतिबाट म प्रसन्न भएँ। हे देवता हो ! अब तिमीहरू आनन्दसित खुसी हुँदै आफ्नो आफ्नो ठाउँमा जाओ। शत्रुको पीडाबाट मुक्त भएका तिमीहरू अब स्वर्गमा गएर राज्यको भोग गर ॥९५-९६॥

---

२९. मात्रायै ते इति न.सं.पु.पाठः।
३०. घोरदैत्यबलोद्धतात् इति न.सं.पु. पाठः।

स्कन्द उवाच

प्रणम्य गिरिजां देवीमष्टाङ्गैर्दण्डवत् क्षितौ। गन्तुं प्रतस्थिरे स्वर्गं देवा हर्षप्रपूरिताः ॥९७॥
हत्वा दैत्यांस्ततो देवी देवान् प्रस्थाप्य वै दिवम्। तत्पूर्वोत्तरभागे च स्वयं जगाम पर्वते ॥९८॥
देवाश्च नाके प्रसभञ्च जग्मुर्निष्कण्टकास्ते सहिरण्यगर्भाः।
तत्रापि राज्यं सुचिरञ्च चक्रुर्देव्याः प्रसादाच्च मुदान्विता वै ॥९९॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे गौरीव्रते कौशिकीमाहात्म्ये शुम्भनिशुम्भवधो नाम द्विचत्वारिंशोऽध्यायः ॥४२॥

---

कार्तिक स्वामीले भन्नुभयो – पृथ्वीमा लम्पसार परी आठै अङ्गले भगवतीलाई दण्डवत् प्रणाम गरेर हर्षित हुँदै देवताहरू स्वर्गका लागि प्रस्थान गरे। दैत्यलाई मारेर देवताहरूलाई स्वर्ग पठाएपछि भगवती हिमालय पर्वतको ईशानभागमा रहेको पर्वतमा जानुभयो। अनि शत्रुरहित भएका देवताहरू ब्रह्माजीलाई साथमा लिएर सरासर स्वर्गमा गए। देवीको कृपाले त्यहाँ आनन्दसित धेरै समयसम्म राज्य गरे ॥९७-९९॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गत हिमवत्खण्डको गौरीव्रत र कौशिकीको माहात्म्यमा देवी भगवतीद्वारा शुम्भ र निशुम्भको वधनामक बयालिसौं अध्याय पूर्ण भयो।

# त्रिचत्वारिंशोऽध्यायः

## गौरीव्रतं कौशिकीमाहात्म्यञ्च

### कार्तिकेय उवाच

कामकूटे गिरिश्रेष्ठे सा देवी च प्रतिष्ठति। तस्मादेव च विख्याता कामिनीति सुरासुरैः ॥१॥
कामशृङ्गे च हेमाढ्ये सहस्रतीर्थशोभिते। राजते तत्र सा नित्यं सिद्धगन्धर्वसेविता ॥२॥
तत्प्रान्तरेषु तीर्थेषु सङ्गमेषु नरोत्तमाः। स्नात्वा सम्यक् दिवं यान्ति बहुपापात्मनोऽपि वा ॥३॥
तेषां[1] तप्तं हुतं दत्तं पितृभ्यो दत्तमक्षयम्। उपोष्यमर्चनं स्तोत्रं तत्सर्वमक्षयं भवेत् ॥४॥
स्नात्वाऽऽरुह्य कामशैलं[2] देवीं सम्प्रेक्ष्य यत्नतः। सर्वपापैर्विनिर्मुक्तः स याति परमां गतिम् ॥५॥
यत् यत् कामयते मत्यस्तत् तत्[3] सर्वं फलं मुने। सम्प्राप्नोत्यचिरं लोके भक्तो देव्याः प्रसादतः ॥६॥
भूयो वक्ष्ये च कौशिक्याः फलान्यत्र घटोद्भव। द्रवीभूताद्रिजायाश्च समाहितमनाः शृणु ॥७॥
स्नानं कुर्वन्ति ये भक्त्या कौशिक्यां यासु कासु च। सर्वपापैर्विनिर्मुक्तास्ते यान्ति परमां गतिम् ॥८॥
कुष्ठवान् मुच्यते कुष्ठात् पापिनोऽपि च पातकैः[4]। अभक्ष्यभक्षणाच्चैव ह्यगम्यगमनादपि ॥९॥
स्वर्णस्तेयी सुरापो वा परद्रव्यापहारकः। मुच्यते सर्वपापेभ्यः स्नानात्तासु न संशयः ॥१०॥
असाध्यं साधयेत्स्नानादपुत्रो लभते सुतम्। दरिद्रो लभते द्रव्यं कन्यार्थी लभते प्रियाम् ॥११॥
मोक्षार्थी लभते मोक्षं स्नानाद् भाग्यं लभेत सः[5]। सार्वभौमार्थिनः स्नानाद् भविष्यन्ति धनेश्वराः ॥१२॥

---

## अध्याय - ४३

### गौरीले गरेको व्रत र कौशिकीको माहात्म्य

कार्तिक स्वामीले भन्नुभयो - ती देवी कामकूट नाम गरेको उत्तम पर्वतमा बस्नुहुन्छ। त्यसैले देवता र राक्षसहरूले उहाँलाई कामिनी भन्छन्। सुनले परिपूर्ण भएको हजारौँ तीर्थद्वारा सुशोभित कामशृङ्ग पर्वतमा भगवती सधैँ बस्नुहुन्छ। सिद्ध र गन्धर्वले उहाँको सधैँ सेवा गर्छन्। त्यसै नजिकमा रहेका तीर्थ र कोशीको सङ्गममा जुन मानिसहरूले भक्तिपूर्वक स्नान गर्छन्, तिनीहरू पहिले धेरै पापी भए तापनि स्वर्ग जान्छन्। ती तीर्थहरूमा जप, होम, दान, पितृतर्पण, उपवास, पूजा, स्तोत्रपाठ जे गरिन्छ, त्यो सबै अक्षय हुन्छ। त्यस नदीमा स्नान गरी कामाचल पर्वतमा उक्लिएर देवीको दर्शन गर्‍यो भने त्यो सम्पूर्ण पापबाट मुक्त भई परम गति प्राप्त हुन्छ ॥१-५॥

हे अगस्त्य मुनि ! यसरी कोशी नदीमा स्नान गरी देवीको दर्शन गर्ने मानिसले जे-जे मनमा चिताउँछ त्यो-त्यो फल देवीको अनुकम्पाबाट तुरुन्त पाउँछ। हे अगस्त्य मुनि ! फेरि पनि पार्वतबाट जलका रूपमा प्रकट भएका कौशिकी नदीहरूको पुण्य फल बताउँछु, मन लगाएर सुन। जुन मानिसहरू भक्तिपूर्वक कुनै पनि कोशी नदीमा स्नान गर्छन्, ती सबै किसिमका पापबाट मुक्त भएर परम गतिमा पुग्छन्। कुष्ठरोग भएको व्यक्ति कुष्ठरोगबाट मुक्त हुन्छ, अभक्ष्य खाँदा र अगम्यामाथि गमन गर्दा लागेको पापबाट पापीहरू मुक्त हुन्छन्। सुन चोर्ने, मदिरा पिउने र अर्काको सम्पत्ति अपकरण गर्ने व्यक्तिहरूले ती नदीमा स्नान गरे भने सम्पूर्ण पापबाट मुक्त हुन्छन्, यसमा शङ्का छैन। स्नान गर्नाले सिद्ध नहुने कुरा पनि सिद्ध हुन्छ, छोरो नहुनुले छोरो पाउँछ, दरिद्रले धन पाउँछ, पत्नी खोज्नेले सुन्दरी स्त्री पाउँछ। मुक्तिको इच्छा गर्ने मानिसले स्नान गर्‍यो भने मोक्ष पाउँछ। राजा हुन चाहने मानिसले स्नान गर्‍यो भने सबैभन्दा धनी हुन्छ ॥६-१२॥

---

१. तेषु इति न.सं.पु.पाठः।
२. स्नात्वा कामाचलं रुह्य इति न.सं.पु.पाठः।
३. कामति मर्त्यो यः शीघ्रं तं तम् इति न.सं.पु.पाठः।
४. कुष्यत्पातकिनोऽपि पातकैः इति न.सं.पु.पाठः।
५. लभेन्नरः इति न.सं.पु.पाठः।

या काचिदबला स्नानं कौशिक्यां सुकरोति वै। भ्रूणघ्नी च दिवं याति सर्वपापैर्विवर्जिता ॥१३॥
दुर्भगाऽपि भवेत्स्नानात् सर्वसौभागिनी क्षितौ। विधवा सधवा नित्यं चिरञ्जीवति तत्पतिः ॥१४॥
प्राप्नोति च सुतान् बन्ध्या स्नानात्पतिप्रिया भवेत्। सुन्दरी च भवेत् स्नानात्कुरूपाऽपि च सर्वदा ॥१५॥
कौशिक्यां कुरुते श्राद्धं पितृभ्यो भक्तियुङ्नरः। पितृनुद्धृत्य सप्तत्रीन् पितृलोके महीयते ॥१६॥
दत्तं हुतञ्च कौशिक्याञ्जप्तं समर्चितं तथा। उपवासश्च धर्मश्च तत्सर्वमक्षयं स्मृतम् ॥१७॥
मृकण्डोश्च सुतो विप्रः पितृन् सन्तर्प्य सन्ततम्। श्राद्धञ्चकार भक्त्या वै कौशिक्याञ्च पुरा मुने ॥१८॥
तत्पितरः समागत्य व्योम्नश्च तत्तटे मुदा। पिण्डैस्तिलोदकैस्तृप्तास्तस्मै प्रददुराशिषम् ॥१९॥

पितर ऊचुः

यस्मात्तिलोदकदानाद्वयं तृप्ताश्च पिण्डतः। चिरञ्जीव्यास्त्वमद्यादि पुत्राऽस्मद्भक्तिभावतः ॥२०॥
मा त्वया म्रियतां पुत्र क्वचित् सर्वयुगेष्वपि। कल्पान्ते वत्स वै त्वं हि हरौ लीनो भविष्यसि ॥२१॥

स्कन्द उवाच

दत्त्वेति पितरस्तस्मै मार्कण्डेयाय वै वरम्। अन्तर्धानं ययुर्व्योम्नि तृप्ताः पिण्डतिलोदकैः ॥२२॥
मार्कण्डेयो हि चाऽद्यापि चिरञ्जीवति विज्वरः। कौशिक्यां पिण्डदानाद्धि पितृणाञ्च प्रसादतः ॥२३॥
सर्वासां सङ्गमेऽन्योन्यं वाञ्छितार्थफलप्रदे। पर्वसु स्नानमात्रेण कुलकोटिं समुद्धरेत् ॥२४॥
सर्वपापैर्विनिर्मुक्तः परिवारैः समन्वितः। कोट्यर्काभविमानस्थः स्नानाद्याति परां गतिम् ॥२५॥

---

सबै सौभाग्य पाउनका लागि प्रसन्न भएर भक्ति गर्दै कुनै स्त्रीले कोशी नदीमा स्नान गरी भने भ्रूणहत्याको पापले युक्त भएकी भए तापनि सम्पूर्ण पापबाट मुक्त भएर त्यो स्वर्ग जान्छे। कोशी नदीमा स्नान गर्नाले अभागिनी पनि पृथ्वीमा भाग्यवती हुन्छे, विधवा सधवा हुन्छे, त्यसको पति लामो समयसम्म बाँच्छ। बाँझी आइमाईले कोशी नदीमा स्नान गरी भने छोराछोरी पाउँछे। त्यो पतिकी प्रिय बन्छे, स्नान गर्दा कुरूप आइमाई पनि सुन्दरी बन्न पुग्छे। जुन मानिसले भक्तिपूर्वक कोशी नदीमा गएर पितृहरूका लागि श्राद्ध गर्छ, त्यसले एक्काइस कुलका पितृहरूलाई उद्धार गर्छ र पितृलोकमा ससम्मान बस्न पाउँछ। कोशी नदीको तीरमा बसेर दान दिएको, हवन गरेको, जप गरेको, पूजा गरेको, उपवास गरेको र धर्म गरेको फल सबै अक्षय हुन्छ। मृकण्डुका छोरा अर्थात् मार्कण्डेय मुनिले अघि कोशी नदीमा पितृहरूलाई तर्पण गरेर भक्तिपूर्वक श्राद्ध गरेका थिए। कोशी नदीको तटमा गरेको पिण्ड र तर्पण गर्दा तृप्त भएर उनका पितृहरू सहर्ष त्यस नदीको तटमा आई मार्कण्डेयलाई आशीर्वाद दिएका थिए ॥१३-१९॥

पितृहरूले भने - तिमीले दिएको तिल, पानी र पिण्डबाट हामी तृप्त भयौं। हे छोरा ! हामीमाथि गरेको भक्तिभावले गर्दा आजदेखि तिमी चिरञ्जीवी भयौ। हे छोरा ! सबै युगमा तिमीले मर्नु नपरोस्। हे बाबू ! कल्पको अन्त्यमा तिमी भगवान् शङ्करमा लीन हुनेछौ ॥२०-२१॥

कार्तिक स्वामीले भन्नुभयो - पितृहरूले ती मार्कण्डेयलाई यस्तो वर दिएर पिण्ड र तर्पणबाट तृप्त भई आकाशमा लीन भए। मार्कण्डेय ऋषिले कोशी नदीमा पिण्ड दान दिएको हुँदा पितृहरूको अनुकम्पाबाट उनी आज पनि चिरञ्जीवी र तापमुक्त भएर बसेका छन्। सम्पूर्ण इच्छालाई पूर्ण गर्ने सबै नदीहरूको परस्पर सङ्गमस्थलमा पर्वहरूमा गएर स्नान गऱ्यो भने मात्रै पनि करोडौं कुललाई उद्धार गर्न सक्छ। कोशी नदीमा स्नान गऱ्यो भने त्यो व्यक्ति सम्पूर्ण पापबाट मुक्त भएर परिवारहरूका साथ करोडौं सूर्यको जस्तो कान्ति भएको विमानमा चढेर परमगतिमा पुग्छ ॥२२-२५॥

अथाऽहञ्च प्रवक्ष्यामि कौशिकीनां पृथक् पृथक्। फलानि च तिथींश्चैव ज्ञात्वा स्यात् फलभाग्जनः[६] ॥२६॥
हरित्कान्त्याः प्रियायाञ्च चतुर्दश्यान्तिथौ मुने। विशेषेण समाप्लाव्यं सर्वफलप्रलब्धये ॥२७॥
पीतवाहाप्रियायाञ्च ह्यमावास्यातिथौ नरैः। स्नातव्यं विधिवद् भक्त्या कामभोगोपलब्धये[७] ॥२८॥
ताम्रकान्त्याः प्रियायाञ्च ह्यष्टम्याञ्च तिथौ पुनः। समाप्लाव्यं मुदा भक्त्या सर्वसौभाग्यलब्धये ॥२९॥
दुग्धकान्तिप्रियायाञ्च नवम्याञ्च तिथौ मुने। स्नातव्यं सततं भक्त्या सौन्दर्यस्वर्गलब्धये ॥३०॥
अमृतवाहिनीनद्याः प्रियायां हि तिथौ तथा। एकादश्यां समाप्लाव्यं वैकुण्ठलब्धये सुखम् ॥३१॥
कृष्णकान्त्याः प्रियायाञ्च द्वादश्यां हि तिथौ मुने। स्नातव्यं भक्तितः स्वर्गसार्वभौमफलाप्तये ॥३२॥
व्योमधाराप्रियायाञ्च पूर्णिमायां तिथौ तथा। स्नातव्यं स्वर्गमोक्षादि सर्वसौख्यफलाप्तये ॥३३॥
एवं तिथिं विचार्याऽऽदौ कर्त्तव्यं स्नानमुत्तमम्। तासु सर्वार्थिभिर्धीरैः सर्वकामफलाप्तये ॥३४॥

कौशिक्याश्च मया मुनीश कथितं स्नानस्य दानस्य[८] वै।
माहात्म्यं हि फलानि ते सुकृतिभिर्गम्यं तथा नाऽन्यथा ॥
गण्डक्याः श्रवणे च मां प्रति पुनः कांक्षा हि यद्यस्ति ते।
सप्तानाञ्च यथोद्भवं शृणु मुने मत्तश्च तद्वच्मि ते ॥३५॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे गौरीव्रते कौशिकीमाहात्म्यं नाम त्रिचत्वारिंशोऽध्यायः ॥४३॥

---

अब म छुट्टाछुट्टै कोशीमा स्नान गर्ने तिथिहरू र त्यसको फल बताउँछु जुन स्नान गर्नाले त्यो फल प्राप्त हुन्छ। हे मुनि ! विशेष ग रेर सबै फल पाउनका लागि हरित्कान्ति नदी (भोटेकोशी वा इन्द्रावती) को प्यारो चतुर्दशी तिथिमा त्यहाँ स्नान गर्नुपर्छ। मुक्तिको इच्छा गर्ने मानिसले विधिपूर्वक भक्ति गररी पीतवाहा नदी (सुनकोशी) को प्यारो अमावास्या तिथिमा त्यहाँ स्नान गर्नुपर्छ ॥२२-२८॥

सबै सौभाग्य पाउनका लागि हर्षसाथ भक्ति गरेर ताम्रकान्ति नदी (तामाकोशी) को प्रिय अष्टमी तिथिका दिन त्यहाँ स्नान गर्नुपर्छ। राम्रो हुन र स्वर्ग प्राप्तिका लागि भक्तिपूर्वक दुग्धकान्ति नदी (दुधकोशी) को प्रिय एकादशी तिथिका दिन त्यहाँ स्नान गर्नुपर्छ। सुखसित वैकुण्ठ जानका लागि अमृतवाहिनी नदी (अरूणकोशी) को प्यारो एकादशी तिथिका दिन त्यहाँ स्नान गर्नुपर्छ। स्वर्ग र चक्रवर्ती राजा हुने फलप्राप्तिका लागि कृष्णकान्ति नदी (तमोरकोशी) को प्यारो तिथि द्वादशीका दिन त्यहाँ भक्तिपूर्वक स्नान गर्नुपर्छ। स्वर्ग, मोक्ष र सबै प्रकारका सुख प्राप्तिका निमित्त व्योमधारा नदी (वरुणकोशी) को प्यारो पूर्णिमा तिथिका दिन त्यहाँ स्नान गर्नुपर्छ। यसरी माथि भनिए अनुसार पहिले तिथिको विचार गरेर सबै कुरा पूर्ण हुन चाहने धीर पुरुषले ती-ती नदीमा गएर स्नान गर्नुपर्छ। हे अगस्त्य मुनि ! मैले कोशी नदीमा स्नान गर्नाले, दान दिनाले र पुण्य कर्म गर्नाले के कस्तो फल प्राप्त हुन्छ, त्यो सबै तपाईंलाई बताएँ। पुण्यवान् मानिसहरूले मात्रै यो फल पाउँछन्, अरूले पाउँदैनन्। अब म फेरि तपाईंलाई गण्डकीको माहात्म्य सुन्ने इच्छा छ भने सातै गण्डकीको उत्पत्तिका बारेमा बताउँछु, सुन्नुहोस् ॥२९-३५॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गत हिमवत्खण्डको गौरीव्रत र कौशिकीको माहात्म्यनामक त्रिचालीसौं अध्याय पूर्ण भयो।

---

६. यस्मात्फलानि लभ्यते इति न.सं.पु.पाठः।
७. भुक्तिकामप्रलब्धये इति न.सं.पु.पाठः।
८. दत्तस्य इति न.सं.पु.पाठः।

# चतुश्चत्वारिंशत्तमोऽध्यायः

## सकलगण्डकीनामाविर्भावो देवघाटमहिमा च

स्कन्द उवाच

दत्त्वा दानं मुनिभ्यश्च यत्र पञ्चाग्निदेवताः । नीलकण्ठह्रदात्पूर्वं ययौ सा सखिभिर्मुदा ॥१॥
आदाय विधिवद्भूयः सर्वदानानि सत्वरम् । तत्पश्चिमञ्च सा गन्तुमियेष धर्मसंयुता ॥२॥
हिमाद्रेर्नीलकूटे सा समागमत्पुनर्मुने । यत्र प्रतप्तवाँश्चाऽत्रिराराध्येशं महामुनिः ॥३॥
अत्रये सा ददौ दानं तमभ्यर्च्य यथाविधि । वासोयुग्मं सुवर्णञ्च कपिलां तिलमोदकम् ॥४॥
तस्या वामपदो घर्मस्तत्राऽपतत्सुनिर्म्मलः । अत्रेः स्थाने महापूते व्रतकुण्डाच्च दक्षिणे ॥५॥
तत्र ददर्श घर्मार्णो गण्डो नाम महामुनिः । गौरीपादतलोद्भूतं ह्रदीभूतञ्च गह्वरे ॥६॥
अतिवृद्धोऽपि गण्डर्षिः समागत्य शनैः शनैः । तपःस्थो घर्मसम्भूते जले सस्नौ[1] निमज्य च ॥७॥
ह्रदादुत्तीर्य गण्डर्षिः स्वदेहञ्च ददर्श सः । पञ्चविंशतिवर्षीयं तरुणाकारमग्रतः[2] ॥८॥
बहुजन्मार्जितैः पापैर्निर्मुक्तो रूपवान्पुनः । सस्मार प्राकृतं कर्म्म पूर्वजातिं स सर्वशः ॥९॥
लोमाञ्चनो मुनिर्भक्त्या चकार हर्षितः स्तवम्[3] । गौरीघर्माम्भसि धीमन् समभ्यर्च्य परिक्रमन् ॥१०॥

गण्ड उवाच

ॐ नमो लोकधात्र्यङ्घ्रिपद्मोद्भवसुवारिणे । सर्वजीवस्वरूपिण्यै जीवितां जीवरूपिणि ॥११॥
नमो जीवनरूपिण्यै जीवदायै च जीवनात् । जीवेश्वर्यै नमस्ते वै जननं देहि सत्फलम्[4] ॥१२॥
नमस्तेऽमृतरूपिण्यै द्रवीभूते नमोऽस्तु ते । द्रवीभूतामृतायै ते चाऽमृतायै नमो नमः ॥१३॥

---

## अध्याय - ४४

### सकल गण्डकीहरूको आविर्भाव र देवघाटतीर्थको महिमा

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! त्यसपछि मुनिहरूलाई दानदक्षिणा दिएर नीलकण्ठ (गोसाईंकुण्ड) को तलाउदेखि पूर्वपट्टि पञ्चाग्निदेवता भएको ठाउँमा प्रसन्न हुँदै सखीहरूलाई साथमा लिएर देवी जानुभयो । अनि फेरि विधिपूर्वक सबै दान गर्ने सामग्री लिएर पसिनै पसिनाले व्याप्त भएकी देवी त्यहाँबाट तुरुन्त पश्चिमतिर जाने विचार गर्नुभयो । हे मुनि ! हिमालयको नीलकूट नाम गरेको टाकुरामा उहाँ जानुभयो । त्यस ठाउँमा महामुनि अत्रि महादेवको पूजा गरेर तपस्या गर्न लाग्नुभएको थियो । देवीले अत्रि ऋषिलाई विधिपूर्वक पूजा गरेर दुई जोर कपडा, सुन, कैलो गाई र तिलका लड्डु दान गर्नुभयो ॥१-४॥

त्यस व्रतकुण्डदेखि दक्षिणतिर अत्यन्त पवित्र अत्रिको आश्रममा देवीको बायाँ पादबाट अत्यन्त निर्मल पसिना खस्यो । त्यहाँ गण्ड नाम गरेका मुनिले गौरीको पैतालाबाट पैदा भएर गुफामा जमेको पसनाको तलाउ देखे । अत्यन्त बूढा भए तापनि तपस्यामा तत्पर ती गण्ड ऋषिले बिस्तारै बिस्तारै पसिनाबाट उत्पन्न भएको त्यस तलाउमा गएर सभक्ति डुबुल्की मारेर स्नान गरे । तलाउबाट बाहिर निस्किएपछि गण्डर्षिले आफ्नो शरीरलाई पच्चीस वर्षको नौजवान जस्तै युवक भएको देखे । धेरै जन्मदेखि जम्मा भएको पापबाट मुक्त भएका रूपवान् ती ऋषिले पूर्वजन्ममा गरेका सबै कर्महरू देखे । हे बुद्धिमान् अगस्त्य ! रौँ नै रौँले छोपिएका ती गण्डक मुनिले सहस्र भक्तिका साथ गौरीको पसिनाबाट उत्पन्न भएको त्यस जलको पूजा गरे, परिक्रमा गरे र स्तुति गरे ॥५-१०॥

गण्ड ऋषिले भने – प्राणीहरूको जीवनस्वरूप भएकी हे देवी ! लोकमाताको पाउरूपी कमलबाट उत्पन्न एवं सबै जीवहरूको स्वरूप भएकी तपाईंलाई नमस्कार छ । तपाईं जीवनरुपिणी हुनुहुन्छ, जीवनबाट जीवन दिन समर्थ हुनुहुन्छ र जीवेश्वर हुनुहुन्छ । तपाईंलाई नमस्कार छ । प्राणीहरूलाई जन्म दिनुहोस् । अमृतस्वरूप भएकी हे देवी ! हजुरलाई नमस्कार छ । सधैँ बग्ने हे देवी ! हजुरलाई नमस्कार छ । अमृत भएर बग्ने अमृतस्वरूपा हे देवी ! हजुरलाई बारम्बार नमस्कार छ ॥११-१३॥

---

१. सस्नौ भक्त्या इति न.सं.पु.पाठः ।
२. पञ्चविंशतिभिरब्दैर्युक्तं युवानमग्रतः इति न.सं.पु.पाठः ।
३. स्तवञ्चकार हर्षितः इति न.सं.पु.पाठः ।
४. जीविनाम् इति न.सं.पु.पाठः ।

भद्रायै च शिवायै च कल्याण्यै कमले नमः। संसारे सारदे भक्त्या साररूपे नमोऽस्तु ते ॥१४॥
संसारभीष्मशार्दूलक्रीडानाशिनि ते नमः। ससारिणामघं भक्त्या विनाशिनि नमोऽस्तु ते ॥१५॥
जीवानामन्तसंस्थित्यै विमलायै नमो नमः। सर्वजीवप्रवन्द्यायै चाऽनघे ते नमो नमः ॥१६॥
रसायै ते रसस्थायै सर्वरसस्वरूपिणि। मान्यायै बहुरूपायै मनोरूपे नमो नमः ॥१७॥
ध्यातव्यायै धरण्यै ते सर्वाधारे नमो नमः। रक्ष रक्ष च मां देवि विश्वरूपे नमोऽस्तु ते ॥१८॥

स्कन्द उवाच

समाकर्ण्य स्तवं दिव्यं गण्डमुनिमुखाच्च्युतम्। जलदेवी ततो भूयो घर्मह्रदाद्विनिर्ययौ ॥१९॥
वरं दातुं मनश्चक्रे जलदेवी ततो मुने। स्तवैः प्रतोषिता तस्मै त्रिविधैश्च मुनेर्भृशम् ॥२०॥

जलदेव्युवाच

वत्स भक्त वरं मत्तो वृणीष्व त्वं यथेप्सितम्। दास्याम्यहञ्च तत्तेऽद्य स्तुतिभिस्ते प्रमोदिता ॥२१॥
ते स्तुतिरज्जुभिर्बध्वा त्वयाऽऽनीताऽत्र गौः स्नुता। यद्रूपा त्वयि शीघ्रं सा कामरसान् स्रविष्यति ॥२२॥

गण्डर्षिरुवाच

अहो भाग्यमनाथस्य भवमग्नस्य मेऽधुना। अद्यैव पितरस्तृप्ताश्चाऽद्यैव तपसः फलम् ॥२३॥
जीवितं सफलं मेऽद्य भवेद् ज्ञानेन्द्रियं तथा। बहुयोगेन सम्प्राप्य त्वद्दर्शनं ममाऽभवत्[५] ॥२४॥
आविर्भूता भवन्ती वै चाऽनुग्रहाय मे यतः। अगोचरा मनोभिश्च योगिनामतिकष्टतः ॥२५॥
याचेऽहं त्वां वरं देवि चाऽगोचरे वरानने। एतद्धि वरदे मह्यं सर्वलोकदयाकरे ॥२६॥
त्वयि ध्यानरतो नित्यं त्वत्पूजने च नैष्ठिकः। त्वत्स्मरणे सुनिष्ठा मे त्वां नमामि भवानि वै ॥२७॥
त्वयि भक्तिरतो नित्यञ्चाऽन्ते तवाऽङ्घ्रिपुष्करे। विलयनं परे मातर्मे वरो दीयतामिति ॥२८॥

---

हे कमला ! कल्याण तथा शिवस्वरूप भएकी हे देवी ! हजुरलाई नमस्कार छ। संसारमा सार वस्तु दिन हजुरलाई सभक्ति नमस्कार छ। संसाररूपी डरलाग्दो बाघको क्रीडालाई नाश गर्ने हजुरलाई नमस्कार छ। प्राणीहरूको पापलाई नाश गर्ने हजुरलाई सभक्ति नमस्कार छ। जीवधारीहरूको अन्तःकरणमा बस्ने निर्मल स्वरूप भएकी तपाईंलाई नमस्कार छ। हे अनघे ! सबै जीवकी वन्दनीय हजुरलाई नमस्कार छ। सबै रसको स्वरूप भएकी हे देवी ! रसमा रहने र मान्य भएर अनेक रूप लिने मनोरूपा हजुरलाई नमस्कार छ। सबैको आधार भएकी हे देवी ! ध्यान गर्न योग्य विश्वरूपा हजुरलाई नमस्कार छ ॥१४-१८॥

कार्तिक स्वामीले भन्नुभयो - गण्डमुनिको मुखबाट प्रकट भएको दिव्यस्तुति सुनेर फेरि पनि पसिनाको तलाउबाट जलदेवी प्रकट हुनुभयो। हे अगस्त्य मुनि ! त्यसबेलामा मुनिले गरेको तीन प्रकारको स्तुतिबाट प्रसन्न भएकी ती जलदेवीले गण्डऋषिलाई वर दिने विचार गर्नुभयो ॥१९-२०॥

जलदेवीले भन्नुभयो - हे भक्त ! हे बाबु ! तिमी जे चाहन्छौ, त्यो वर मसँग माग। तिम्रो स्तुतिले म प्रसन्न भएकी छु, तिमीलाई चाहिएको वर आज दिन्छु। तिमीले आफ्नो स्तुतिरूपी डोरीले बाँधेर दूध दिने गाईलाई यहाँ ल्यायौ। मेरो स्वरूप भएकी ती गाईले चाँडै नै दूधरूपी इच्छा लागेको वस्तु बगाइदिनेछिन् ॥२१-२२॥

गण्डर्षिले भने - अनाथ, दुःखी मेरा निम्ति अहिले ठूलो भाग्य खुलेको छ, आज नै मेरा पितृहरू तृप्त भए, आज मेरो तपस्या सफल भयो। आज मेरो जीवन र ज्ञानेन्द्रियहरू सफल भए। ठूलो योग र समाधि लगाएपछि मात्र पाइने हजुरको दर्शन गर्न मैले पाएँ। योगीहरूको मनलाई पनि कष्ट नगरी नदेखिने हजुर मलाई अनुग्रह गर्न प्रकट हुनुभयो। हे देवी ! सबै लोकलाई वर दिने, अज्ञानीले देख्न नसक्ने हजुरसँग म यही वर माग्छु। हे भवानी ! म सधैं हजुरको ध्यानमा लाग्न सकूँ, हजुरको पूजा र सम्झनामा मेरो निष्ठा रहिरहोस्, हजुरलाई नमस्कार छ। हजुरमा सधैं मेरो भक्ति लागोस्। अन्त्यमा हजुरको पाउरूपी अति श्रेष्ठ कमलमा गएर मिल्न पाऊँ। हे आमा ! मलाई यही वर दिनुहोस् ॥२३-२८॥

---

५. भवेन्मम इति न.सं.पु.पाठः।

जलदेव्युवाच

तत्तथाऽस्तु च ते वत्स यत्ते मनसि वर्त्तते। भूत्वा योगीश्वरश्चेह चाऽन्ते मत्पदि लीयताम् ॥२९॥
भूयो दास्ये वरं तुभ्यं शृणु स्वान्तसमाहितः। यस्मान्मद्भक्तियुक्तस्त्वं मन्मूर्त्यम्बुसमाप्लवात् ॥३०॥
पुण्यं यत्र च मत्स्वेदबिन्दुः पतिष्यति द्विज। तत्र तत्र नदीमूर्त्तिर्धारा सत्वरगामिनी ॥३१॥
सप्त धारा भविष्यन्ति ता मे जानीहि मूर्त्तिकाः। तास्ते नाम्ना भविष्यन्तु प्राक् स्नानात्ते मुने सदा ॥३२॥
गण्डेनाऽऽदौ हि संस्नातं गण्डकीति भविष्यति। लोकाश्च सप्त गण्डक्यो वदिष्यन्तीति सन्ततम् ॥३३॥
प्रस्थानं कुरुते स्नातुमेकचित्तो गृहाद्धि यः। पदे पदेऽश्वमेधस्य फलं स्नानात् समाप्नुयात्[६] ॥३४॥
यः करिष्यति सुस्नानं सर्वपापैः प्रमुच्यते। श्राद्धं करिष्यति श्रेष्ठं चाऽक्षयञ्च भविष्यति ॥३५॥
जपहोमार्चनं दानं यः करिष्यति मत्तटे। सर्वपापैर्विनिर्मुक्तः स यास्यति परां गतिम् ॥३६॥

स्कन्द उवाच

एवं दत्त्वा वरं तस्मै भविष्यं श्रावयन्त्यसौ[७]। तिरोधानं ययौ विद्वञ्जलदेवी च तज्जले ॥३७॥
दत्त्वा दानं ततो गौरी रौप्यशृङ्गं जगाम च। ध्यायन् प्रभुं[८] शिवं यत्र मरीचिस्तप्तवान् पुनः ॥३८॥
स ददर्श ततो यान्तीं गौरीं तां सखीभिः समम्। नीलाद्रेः पश्चिमे शृङ्गे यत्र योजनदूरतः ॥३९॥
सोऽप्यन्वगच्छदार्याया भक्तियुक्तः स्तुवन्मुहुः। ध्यात्वा हृदरविन्दे तां दीपशिखाकृतिं पराम् ॥४०॥
तत्र गौरी ददौ दानं पूजयित्वा मरीचये[९]। तिलधेनुं सुवर्णं गां यज्ञसूत्रञ्च मोदकान् ॥४१॥
तत्रैव चाऽपतद् घर्मो गौर्याश्चिबुकदेशतः। नदीभूता च तत्कूटादुवाहाऽथोर्मिमालिनी ॥४२॥

---

जलदेवीले भन्नुभयो – हे बाबु ! तिमीले मनमा जे चिताएका छौ, त्यही पूर्ण हुनेछ। यो लोकमा योगेश्वर भएर अन्त्यमा तिमी मेरो पाउमा लीन हुनेछौ। फेरि म तिमीलाई अर्को वर दिन्छु, ध्यान दिएर सुन। मेरो मूर्तिस्वरूप भएको पानीमा पौडिएको हुँदा तिम्रो ममाथि भक्ति बढेको छ त्यसैले गर्दा जहाँ–जहाँ मेरो पसिनाको थोपा खस्छ त्यहाँ त्यहाँ ती थोपाहरू नदीको मूर्ति भएर सात धारामा प्रकट हुनेछन्, तिनलाई मेरै मूर्ति ठान। तिमीले सबैभन्दा पहिले स्नान गरेको हुँदा ती नदीहरू तिम्रो नामबाट प्रसिद्ध हुनेछन्। गण्डले प्रथम स्नान गरेको हुँदा गण्डकी र सप्तगण्डकी भनेर लोकले ती नदीको नाम राख्नेछन्। गण्डकीमा जो मानिस एकचित्त भएर स्नान गर्न घरबाट प्रस्थान गर्छ त्यसले ती नदीमा स्नान गरेपछि पाइलैपिच्छे अश्वमेध यज्ञ गरेको फल पाउँछ। जसले विधिवत् गण्डकी नदीमा स्नान गर्छ त्यो सम्पूर्ण पापबाट मुक्त हुन्छ। जसले त्यहाँ श्राद्ध गर्छ, त्यो सबै अक्षय्य हुनेछ। जसले मेरो अर्थात् गण्डकीको तटमा जप, होम, पूजा र दान गर्छ त्यसले सम्पूर्ण पापबाट मुक्त भएर परमगति प्राप्त गर्छ ॥२९-३६॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! यसरी वर दिएर भावी कुरा सुनाउँदै जलदेवी त्यसै जलमा अन्तर्धान हुनुभयो। त्यसपछि ती ऋषिलाई दान दिएर शिवजीको ध्यान गरी तपस्या गरेर बसेका मरीचि ऋषिले सुहाएको रौप्यशृङ्ग नाम गरेको पर्वतमा पार्वती जानुभयो। एक योजन टाढाबाटै नीलाद्रि पर्वतको पश्चिम शिखरमा सखीहरूका साथ जान लागेकी पार्वतीलाई मरीचिले देख्नुभयो। बत्तीको जस्तो उज्यालो स्वरूप भएकी ती देवीलाई हृदयमा ध्यान गरेर बारम्बार भक्तिपूर्वक स्तुति गर्दै मरीचि ऋषि गौरीको पछि लाग्नुभयो। त्यसपछि पार्वतीले त्यसै ठाउँमा मरीचि ऋषिलाई भक्तिपूर्वक पूजा गरेर तिलधेनु, सुन, गाई, जनै र लड्डु दान दिनुभयो। त्यसै ठाउँमा गौरीको चिउँडोबाट पसिना खस्यो, त्यस टाकुराबाट तरङ्गमय भएर नदी बग्न थाल्यो ॥३७-४२॥

---

६. लभ्यात्समाप्लवात् इति न.सं.पु.पाठः।
७. श्रावयन्पुनः इति न.सं.पु.पाठः।
८. ध्यायमानः इति न.सं.पु.पाठः।
९. मरीचयेऽर्च्य भक्तितः इति न.सं.पु.पाठः।

समभ्यर्च्य च तां भक्त्या सस्नौ तस्यां स्तुवन्मुदा। सितकान्त्याञ्च गण्डर्षिः सन्तर्प्य च पितॄन् सुरान् ॥४३॥
ततोऽगमत्पुनर्गौरी महाकूटञ्च तप्तवान्। पुलस्त्य यत्र योगीशः सोऽन्वगच्छन्मुनिस्त्वसौ ॥४४॥
ददौ दानं मुदा गौरी पूजयित्वोपवीतकम्[१०]। वासोयुग्मं सवर्णं गां कनकं तिलमोदकम् ॥४५॥
तत्रापि चाऽपतद् घर्मो वामसृक्किणीतो हि तत्। नदीभूता च पीताभा योवाह गिरिशेखरात् ॥४६॥
आनर्च विधिवत्तस्यै भक्त्या तुष्टाव हर्षितः। सस्नौ तस्याञ्च गण्डर्षिः सन्तर्प्य च पितॄन् सुरान् ॥४७॥
भूयोऽगमत्ततो गौरी मणिकूटे च तप्तवान्। पुलहो यश्च योगीशस्तस्याः सोऽन्वगमत्पुनः ॥४८॥
आनर्च विधिवद् भक्त्या तं भक्त्या गिरिजा मुदा। पञ्चोपचारकैर्दिव्यैर्भूदिवं दिव्यवर्चसम् ॥४९॥
पुलहाय ददौ गौरी दानं गाः स्वर्णकं तिलान्। करकान् यज्ञसूत्रञ्च गुडाज्यमिश्रपिष्टकम् ॥५०॥
तत्राऽपतच्च घर्मो वै तत्कपोलात्सुनिर्मलः। नदीभूता हि तच्छृङ्गादुवाह श्वेतवाहिनी ॥५१॥
सुवेगिनीं नदीं दृष्ट्वा बहुकल्लोलिनीं मुदा। सस्नौ भक्त्या च गण्डर्षिः सन्तर्प्य पितृदेवताः[११] ॥५२॥
भूयो जगाम चावाचीं योजनद्वयदूरतः। रत्नशृङ्गे त्वगच्छत्सा ऋतुर्यत्र प्रतप्तवान् ॥५३॥
बहु दानं ददौ[१२] तस्मै तिलकाञ्चनमिश्रितम्। कपिलां यज्ञसूत्रञ्च करकाँश्च समोदकान्[१३] ॥५४॥
तत्राऽपतद्धि घर्मश्च तदलकात्सुनिर्मलः। नानावर्णा नदीभूता योवाह शृङ्गदेशतः ॥५५॥
स्वच्छधारां नदीं दृष्ट्वा त्रैलोक्यपावनीं मुदा[१४]। सस्नौ तस्यां हि गण्डर्षिः तर्पयन्[१५] पितृदेवताः ॥५६॥

---

गण्ड ऋषिले सफा कान्ति भएको त्यस नदीको भक्तिपूर्वक पूजा गरेर सहर्ष स्तुति गर्दै स्नान गरे, देवता र पृथ्वीहरूको पनि तर्पण गरे। त्यसपछि फेरि पार्वती महाकूट नाम गरेको अग्लो टकुरामा जानुभयो। त्यहाँ योगीश्वर तपस्वी पुलस्त्य बस्नुभएको थियो। देवीलाई देखेर पुलस्त्य मुनि उहाँको पछि लागे। त्यसपछि गौरीले ऋषिको सत्कार गर्नुभयो। जनै, गाई, सुन, तिलका लड्डु, दुईदुई जोर लुगा र असर्फीसमेत दान गर्नुभयो ॥४३–४५॥

त्यहाँ पनि देवीको बायाँ ओठको छेउबाट पसिना खस्यो। त्यो पसिना पहेँलो वर्ण भएको नदी भएर पहाडको टकुरामा झर्‍यो। खुसी भएका गण्ड ऋषिले ती नदीको विधिवत् पूजा गरे, स्तुति गरे, त्यहाँ स्नान गरेर पितृहरूलाई तर्पण दिए। योगीश्वर पुलह ऋषिले तपस्या गरेको मणिकूट नाम गरेको ठाउँमा पार्वती जानुभयो। उनले देवीलाई देखे, र देवीको पछि लागे। पार्वतीले विधिपूर्वक सहर्ष पञ्चोपचार विधिले दिव्य तेज भएका ती ब्राह्मणको पूजा गर्नुभयो। पार्वतीले गाई, सुन, असर्फी, तिल, जनै र कमण्डलु दान गर्नुभयो र सखर हालेको पिठोबाट निर्मित विभिन्न किसिमका मिष्टान्नहरू भोजन गराउनुभयो ॥४५–५०॥

त्यस ठाउँमा पार्वतीको गालाबाट निर्मल पसिनाको विन्दु खस्यो। त्यो विन्दु त्यसै पर्वतको शिखरबाट सेतो नदी (सेती गण्डकी) भएर बग्यो। राम्रो वेग र तरङ्गले युक्त भएको त्यो नदीलाई देखेर गण्ड ऋषिले भक्तिपूर्वक त्यहाँ स्नान गरे, पितृ र देवतालाई तर्पण दिए। त्यसपछि पार्वती दुई योजन टढा रहेको उत्तर दिशामा जानुभयो। रत्नशृङ्ग नाम गरेको त्यस पर्वतमा ऋतु नाम गरेका ऋषिले तपस्या गरेका थिए। पार्वतीले ती ऋषिलाई कैली गाई, जनै, लड्डु, कमण्डलु र सुन राखेको तिल दान गर्नुभयो। त्यस ठाउँमा पार्वतीको केशबाट निर्मल पसिनाको बिन्दु झर्‍यो। त्यो विन्दु विभिन्न वर्ण भएको नदी भएर त्यसै शिखरबाट बग्यो। गण्डर्षिले निर्मल प्रवाह भएकी विश्वलाई पवित्र गर्ने नदीलाई देखेर त्यहाँ स्नान गरे, पितृ र देवतालाई तर्पण दिए ॥५१–५६॥

---

१०. तस्मै पून्योपवीतकम् इति न.सं.पु.पाठः।
११. पितृदैवतान् इति न.सं.पु.पाठः।
१२. ददौ दायं बहून् इति न.सं.पु.पाठः।
१३. मोदकान् करकान् तथा इति न.सं.पु.पाठः।
१४. दृद्ष्वा सुनिर्मलां धारां नदीं विश्वपवित्रिणीम् इति न.सं.पु.पाठः।
१५. सन्तर्प्य इति न.सं.पु.पाठः।

तत्रापतत् पुनर्घर्मस्तल्ललाटात् सुनिर्मलः । दुग्धाभार्णनदीभूता चैकशृङ्गादुवाह च ॥५९॥
दत्त्वा दानं पुनर्गौरी तदवाचीञ्जगाम च । योजनद्वयदूरे वै भृगुर्यत्र प्रतप्तवान् ॥५७॥
सोऽन्वगच्छत्पुनस्तस्या ददौ गौरी च वाससी । भृगवे गां तिलान् स्वर्णं गुडाज्यसक्तुमिश्रितान्[१६] ॥५८॥
दृष्ट्वा नदीं वरां श्वेतामेकशृङ्गावतारिणीम् । सस्नौ भक्त्या च गण्डर्षिः तर्पयन्[१७] पितृदेवताः ॥६०॥
ततो जगाम सा गौरी द्विकूटे तुङ्गशेखरे । तप्तवानङ्गिरा यत्र तस्याश्चाऽन्वगमन्मुनिः ॥६१॥
बहु दानं ददौ तस्मै[१८] गौरी चाऽभ्यर्च्य भक्तितः । तिलधेनुं सुवर्णञ्च पिण्याकं सघृतञ्च गाम् ॥६२॥
तत्रापतदपाङ्गाच्च घर्मविन्दुः सुनिर्मलः । ततो नदी च[१९] नीलाभा योवाह तुङ्गशेखरात् ॥६३॥
भिन्नाञ्जननिभा पत्रे मसीधारामिवार्जुने । प्रेक्ष्य सस्नौ च गण्डर्षिः सन्तर्प्य पितृदेवताः ॥६४॥
एवं दत्त्वा मुनिभ्यश्च नानादानानि भक्तितः । सप्तभ्यो गिरिजा देवी प्रतस्थे हि पुनस्ततः ॥६५॥
समाययौ च तस्मात्सा यत्र पञ्चाग्निदेवताः । नीलकण्ठह्रदात् प्राच्यां[२०] प्रतप्तं सखीभिः पुरा ॥६६॥
समाप्य पञ्चमे वर्षे पञ्चाग्न्याख्यं व्रतं हि सा । भोज्यं दानानि दत्त्वैवं स्वगेहमगमत्पुनः ॥६७॥
एवं या कुरुते चोमाव्रतं नारी महोत्सवैः । समाप्य पञ्चमे वर्षे नानाविभवविस्तरैः ॥६८॥
द्विजातिं भोजयेत् पञ्च संवर्ध्य प्रतिहायनम् । यावत्पञ्चाब्दकं सम्यग् दद्याद्दानानि सर्वशः ॥६९॥
सर्वपापैर्विनिर्मुक्ता पतिपुत्रसमन्विता । इहलोके सुखं भुक्त्वा सा यास्यति परां गतिम् ॥७०॥
येन कामेन तं धर्मं[२१] यावज्जीवं करोति या । तं तं कामं समाप्नोति सर्वपापैर्विवर्जिता ॥७१॥
सार्वभौमप्रिया भूत्वा सर्वभोग्यप्रमोदिनी । अन्ते च लभते[२२] मोक्षं समुद्धृत्य कुलानि च ॥७२॥
ततश्च जलदेवी सा विनिर्ययौ जलात्पुनः । आविर्भूता तदा तत्र गण्डर्षिमित्युवाच ह ॥७३॥

---

त्यहाँ फेरि पार्वतीको निधारबाट निर्मल पसिनाको थोपो खस्यो । त्यो थोपो दूधको जस्तो वर्ण भएको जल भएर एकशृङ्ग नाम गरेको पर्वतबाट बग्यो । गण्ड ऋषिले एकशृङ्ग पर्वतबाट झरेकी उत्तम नदीलाई देखे । उनले त्यहाँ भक्तिपूर्वक स्नान गरे । पितृ र देवताको तर्पण गरे । त्यसपछि पार्वती दुईवटा शिखर भएको तुङ्गशेखर नाम गरेको पर्वतमा जानुभयो, जहाँ अङ्गिरा ऋषि पार्वतीको पछि लागे । पार्वतीले उनलाई भक्तिपूर्वक पूजा गरेर तिल, गाई, सुवर्ण, घ्यू हालेको लड्डु आदि धेरै वस्तुहरू दान दिनुभयो ॥५९-६२॥

त्यसै ठाउँमा उहाँको अपाङ्गबाट निर्मल पसिनाको थोपा झऱ्यो । त्यो विन्दु नीलो वर्ण भएको नदी बगेर तुङ्गशेखर नाम गरेको पर्वतमा बग्यो । सेतो कागजमा कालो मसीको धारजस्तो भएर बगेको गाजलजस्तो नदीलाई देखेर गण्ड ऋषिले त्यस नदीमा स्नान गरे । उनले देवता र पितृहरूको पनि तर्पण गरे । त्यसपछि गण्डसहित सातै मुनिहरूलाई पार्वती देवीले विभिन्न दानहरू दिनुभयो र त्यहाँबाट फेरि प्रस्थान गर्नुभयो । नीलकण्ठ तलाउदेखि पूर्वपट्टि रहेको, सङ्गिनीहरूका साथमा बसेर आफूले तपस्या गरेको, पञ्चाग्नि देवता भएको ठाउँमा उहाँ पुग्नुभयो । यसरी पाँच वर्षमा पञ्चाग्नि नाम गरेको व्रत पूर्ण गरेर भोजन तथा दानहरू दिई पार्वती फेरि आफ्नो घरमा जानुभयो ॥६३-६७॥

यसरी जुन स्त्रीजातिले ठूलो उत्सवका साथ पाँच वर्षसम्म व्रत गरेर पाँच जना ब्राह्मणलाई विभिन्न किसिमका सामग्रीद्वारा भोजन गराउँछे र दक्षिणा दिन्छे, त्यो नारी सबै पापबाट मुक्त भएर पति र पुत्रका साथ यो लोकमा सुखभोग गरी अन्त्यमा परमपदमा पुग्छे । जुन इच्छा राखेर जीवनपर्यन्त नारीले धर्म गर्छे त्यसले सबै पापबाट मुक्त भएर त्यो त्यो (चाहे अनुसारको) पाउँछे । चक्रवर्ती राजाकी रानी भएर सबै सुखभोग गरी अन्त्यमा उसले आफ्नो कुलको उद्धार गर्छे र आफू पनि मुक्त हुन्छे ॥६८-७२॥

हे अगस्त्य मुनि ! त्यसपछि जलदेवी जलबाट प्रकट हुनुभयो र गण्ड ऋषिलाई भन्न लाग्नुभयो ॥७२-७३॥

---

१६. सक्तुगुडाज्यमिश्रितान् इति न.सं.पु.पाठः । १७. सन्तर्प्य इति न.सं.पु.पाठः । १८. तस्मै ददौ बहून् दायान् इति न.सं.पु.पाठः ।
१९. नदीभूता च इति न.सं.पु.पाठः । २०. पूर्वम् इति न.सं.पु.पाठः । २१. तद्धर्मम् इति न.सं.पु.पाठः ।
२२. प्रलभ्यते इति न.सं.पु.पाठः ।

जलदेव्युवाच

अहोभाग्यवतां श्रेष्ठ शृणु मत्तो वचः पुनः। यस्मात्सर्वासु धारासु स्नातं सुश्रद्धया त्वया ॥७४॥
कोटियुगं सुखं भुक्त्वा पश्चाद्योगीश्वरो भव। तदन्ते मयि लीनस्त्वं भविष्यसि मुनीश्वर[२३] ॥७५॥
भूयश्च सप्तधाराणां गण्डकीनाञ्च वच्मि ते। अभिधानानि सर्वासां शृणु पृथक् पृथक् सुत ॥७६॥
धर्मधारा यशोधारा विश्वधारा सितप्रभा। रत्नधारा सुवर्णाभा कृष्णाभा सप्त विश्रुताः[२४] ॥७७॥
माहेश्वरी ततो ब्राह्मी नारसिंही च वैष्णवी। कौमारी कालिका गङ्गा गण्डक्यः क्रमशोऽभवन् ॥७८॥
तासां सुसङ्गमे तीर्थे बहुपुण्यफलप्रदे। गत्वा स्थित्वा[२५] मुने स्नात्वा फलं कोटिगुणं भवेत् ॥७९॥
ततश्च धर्मधाराया नामधेयञ्च सन्ततम्। लोकास्त्रिशूलगङ्गेति वदिष्यन्ति समादरात्[२६] ॥८०॥
एतानि नामधेयानि समाधाय ध्रुवं हृदि। स्नात्वा गच्छ मुनिश्रेष्ठ यत्र तप्तं त्वया पुरा ॥८१॥

स्कन्द उवाच

इत्युक्त्वा जलदेवी सा वरं गण्डर्षये पुनः। दत्त्वेप्सितञ्च तस्यैवं तिरोधानं ययौ जले ॥८२॥
गण्डर्षिश्च वरं लब्ध्वा जलदेव्याः स्ववाञ्छितम्। नीलाद्रेः पूर्वकूटे वै ययौ तप्तुञ्च हर्षितः ॥८३॥
ततो देवाः सगन्धर्वाः पिशाचा गुह्यकास्तथा। ऋषयश्च समागत्य सस्नुस्तासु यथाविधि ॥८४॥
आनर्चुर्जलदेवीं ते तेपुर्जेपुर्मनुं हृदा[२७]। ददुर्दानानि तद्भक्त्या तां स्तवैः स्तुष्टुवुः पुनः[२८] ॥८५॥
ध्यानानि[२९] च पुनश्चक्रुः सस्नुः पर्वसु पर्वसु। आजग्मुश्च ततस्ते वै स्वं स्वं स्थानं मुदाऽन्विताः ॥८६॥

---

जलदेवीले भन्नुभयो – हे भाग्यमानी गण्ड ! म तिमीलाई फेरि भन्छु, सुन। मेरा यी सबै जलधाराहरूमा श्रद्धापूर्वक तिमीले स्नान गरेका छौ। त्यसैले करोड युगसम्म सुख भोगेर पछि तिमी योगीश्वर हुनेछौ, अन्त्यमा फेरि फर्कनु नपर्ने गरी मैमा तिम्रो लीन हुनेछौ, शङ्का छैन ॥७४–७५॥

हे मुनि ! अब म गण्डकीका सातै धाराको बेग्ला बेग्लै नाम तिमीलाई भन्छु, हे पुत्र ! सुन। धर्मधारा, यशोधारा, विश्वधारा, सितप्रभा, रत्नधारा, सुवर्णाभा र कृष्णाभा यी गण्डकीका सात धारा हुन्। माहेश्वरी, ब्राह्मी, नारसिंही, वैष्णवी, कौमारी, कालिका र गङ्गा यी क्रमैले भएका गण्डकी हुन्। हे मुनि ! अत्यन्त पुण्यदायक ती नदीहरूको परस्पर सङ्गममा स्नान गर्नाले करोडौं गुणा बढी फल प्राप्त हुन्छ। धर्मधाराको नामलाई अतिशय सम्मान गरेर मानिसहरूले त्यसलाई त्रिशूलगङ्गा (त्रिशूली नदी) भन्नेछन्। हे मुनि श्रेष्ठ ! यी नामहरूलाई हृदयमा धारण गरेर अघि तिमीले जहाँ स्नान गरेका थियौ, त्यहाँ तिमी आऊ ॥७६–८१॥

कार्तिक स्वामीले भन्नुभयो – यसरी जलदेवीले गण्ड ऋषिलाई इच्छाअनुसारको वर दिएर त्यसै जलमा अन्तर्धान हुनुभयो। जलदेवीबाट इच्छा लागेको वर प्राप्त गरेर गण्ड ऋषि पनि नीलाद्रि पर्वतको पूर्वपट्टिको शिखरमा सहर्ष तपस्या गर्न गए। त्यसपछि देवता, गन्धर्व, पिशाच, गुह्यक र ऋषिहरू आएर उनीहरूले ती नदीहरूमा विधिपूर्वक स्नान गरे। अनि उनीहरूले देवीलाई पूजा गरे, तपस्या गरे, जप गरे र भक्तिपूर्वक दान पनि दिए, देवीको फेरि पनि स्तुति गरे। फेरि योग गरे, पर्व–पर्वमा उनीहरूले स्नान गरे। त्यसपछि प्रसन्न भएर ती ऋषि र देवताहरू आ–आफ्नो स्थानमा आए ॥८२–८६॥

---

२३. लीनो वै भविष्यसि न निर्वृतिः इति न.सं.पु.पाठः।
२४. स्याच्च सप्तकाः इति न.सं.पु.पाठः।
२५. अन्योन्यञ्च इति न.सं.पु.पाठः।
२६. समाद्रितः इति न.सं.पु.पाठः।
२७. आनर्चुस्ताञ्च तेपुस्ते जेपुः सुनिश्चितं तदा इति न.सं.पु.पाठः।
२८. भक्त्या वै तस्यै च तुष्टुवुः पुनः इति न.सं.पु.पाठः।
२९. योगानि इति न.सं.पु.पाठः।

तदाद्यद्यापि गण्डक्यः सर्वाः पूताः सरिद्वराः। सन्ति लोके यतो धीमन् गौरीदेहाद् विनिःसृताः[३०] ॥८७॥
तासु कुर्वन्ति ये स्नानं न पश्यन्ति यमालयम्। सर्वपापैर्विनिर्मुक्ता गच्छन्ति परमां गतिम् ॥८८॥
व्रजन्ति ये गृहात्स्नातुं मनसीति विधाय वै। करिष्यामि च गण्डक्यां स्नानञ्च भक्तिपूर्वकम् ॥८९॥
पदे पदे फलं लब्ध्वा वाजिमेधस्य[३१] मानुषाः। लभन्ते परमं स्थानं विमुच्य सर्वकिल्विषान् ॥९०॥
ये कुर्वन्ति तटे श्राद्धं तस्यास्तत्पितरो मुदा। तेभ्यो दत्त्वाऽऽशिषं स्वर्गमधःस्था वै व्रजन्त्यपि ॥९१॥
यज्ञार्चनं जपं तीरे तासां वै सङ्गमे नराः। कुर्वन्ति शिवभक्त्या ये तेषां पुण्यफलं शृणु ॥९२॥
सूर्यायुतप्रतीकाशविमानस्थश्च सान्वयः। गीतवाद्यमहोल्लासैरप्सरोभिः प्रसेव्यते ॥९३॥
विधूय सर्वपापानि धूयमानश्च चामरैः। सर्वलोकान्मुदा पश्यन् शिवलोके महीयते ॥९४॥
यो ददाति च दानानि स्वल्पं वा यदि वा बहु। स्वर्णानि गां च वासांसि तस्य[३२] पुण्यफलं शृणु ॥९५॥
सार्वभौमो नृपो भूत्वा राज्यं निष्कण्टकं मुदा। भुङ्क्ते यथेप्सितं लोके[३३] देहान्ते पापवर्जितः ॥९६॥
तद्देहञ्च पुनस्त्यक्त्वा श्रुतियुक्तो भवेद् द्विजः। तपोभिस्तां तनुं त्यक्त्वा[३४] निर्वाणं लभते सुखम् ॥९७॥
आप्लवन्ते[३५] च गण्डक्यां या नार्यो दुर्भगा अपि। भ्रूणहत्यादिभिः पापैर्मुच्यन्ते नाऽत्र संशयः ॥९८॥
यं यमिच्छन्ति कामं वै प्राप्नुवन्ति तमाऽऽशु च। आप्लवन्ते[३६] च या भक्त्या गण्डक्यां यत्र कुत्रचित् ॥९९॥
कुरूपाऽपि भवेत् स्नाता नारी श्रेष्ठाऽतिसुन्दरी। लोका मुह्यन्ति तां दृष्ट्वा लोकानां स्वान्तहारिणी ॥१००॥
दुर्भगाऽपि च या नारी तस्यां स्नानाद् भवेत्पुनः। सर्वसौभागिनी रामा पतिप्रिया सुतप्रसूः ॥१०१॥
विधवा सधवा तस्यां भवेज्जन्मनि जन्मनि। स्नानाद् दानाद्धि विप्रेभ्य उपवासव्रतादिभिः[३७] ॥१०२॥

---

हे मुनि ! त्यसै समयदेखि लिएर आजसम्म सबै गण्डकीहरू श्रेष्ठ नदी र पवित्र मानिएका छन् किनभने ती नदीहरू गौरीको शरीरबाट प्रकट भएका थिए। ती नदीहरूमा जसले स्नान गर्छन्, ती व्यक्तिहरूले यमलोक देख्नुपर्दैन, सम्पूर्ण पापबाट मुक्त भएर परमगतिमा पुग्छन्। गण्डकीको स्नान गर्छु भन्ने मनमा प्रतिज्ञा गरेर स्नान गर्नका लागि जुन मानिसहरू घरबाट हिँड्छन्, तिनीहरूले पाइलैपिच्छे अश्वमेध यज्ञ गरेको फल पाउँछन्। सम्पूर्ण पापबाट मुक्त भएर परमपद पाउँछन् ॥८७-८९॥

जसले गण्डकीको तीरमा श्राद्ध गर्छन्, नरकमा बसेका भए पनि तिनका पितृहरू त्यसलाई आशीर्वाद दिएर स्वर्ग जान्छन्। जसले शिवजीप्रति भक्तिभाव राखेर ती नदीको सङ्गमस्थलको तटमा यज्ञ, पूजा र जप गर्छन्, तिनीहरूको पुण्यफल सुन। दश हजार सूर्यजस्तै तेजिलो विमानमा सपरिवार बसेर ससम्मान सबैका अगाडि शिवलोक जान पाउँछन्। गाना, बजाना र ठूलो उत्सवका साथ चमर हल्लाउँदै अप्सराहरूले त्यसको सेवा गर्छन्, सम्पूर्ण पापहरूबाट त्यो मुक्त हुन्छ। जसले थोरै अथवा धेरै सुन, अन्न, गाई र वस्त्र दान गर्छ, त्यसको पुण्यफल सुन। त्यो व्यक्ति चक्रवर्ती राजा भएर प्रसन्न हुँदै निष्कण्टक भएर इच्छा अनुसारको राज्यभोग गर्दछ र मरेपछि पापबाट मुक्त हुन्छ। त्यो शरीर छोडेपछि अर्को जन्ममा वेदज्ञ ब्राह्मण भएर जन्मन्छ र तपस्या गरेर त्यस शरीरलाई पनि त्यागेपछि त्यसले मोक्ष पाउँछ ॥९०-९७॥

गण्डकी नदीमा जुन स्त्रीहरूले स्नान गर्छन्, दुष्ट नै भए पनि तिनीहरू भ्रूणहत्या आदि गरिएका पापबाट मुक्त हुन्छन्, यसमा सन्देह छैन। गण्डकीको कुनै पनि क्षेत्रमा जुन नारीहरूले स्नान गर्छन् तिनले जे जे चाहन्छन् त्यही त्यही फल तुरुन्त पाउँछन्। कुरूप नारीले पनि गण्डकीमा स्नान गरी भने अत्यन्त सुन्दरी हुन्छे, मानिसको हृदय हरण गर्न सक्छे, मानिसहरू त्यसलाई देखेर मोहित हुन्छन्। अभागिनी नारीले पनि यदि गण्डकीमा स्नान गरी भने त्यो सौभाग्यवती हुन्छे, पतिकी प्यारी हुन्छे र पुत्रवती हुन्छे। विधवा नारीले गण्डकीमा स्नान गरेर ब्राह्मणहरूलाई दान, उपवास गरेर व्रत गरी भने त्यो नारी अरू जन्ममा सधवा हुन्छे ॥९८-१०२॥

---

३०. भवेयुस्ता यतो धीमन् गौरीदेहात्प्रतिसृताः इति न.सं.पु.पाठः।
३१. अश्वमेधस्य इति न.सं.पु.पाठः।
३२. स्वर्णान्नं गां च वासांसि तेषाम् इति न.सं.पु.पाठः।
३३. यथेप्सितञ्च भुञ्जन्ति इति न.सं.पु.पाठः।
३४. तपोभिस्त्यज्य तत्कायम् इति न.सं.पु.पाठः।
३५. आप्लवन्ति इति न.सं.पु.पाठः।
३६. समाप्लवन्ति इति न.सं.पु.पाठः।
३७. उपोष्य व्रतमाचरन् इति न.सं.पु.पाठः।

सर्वासां सङ्गमे धीर देवघट्ट इति श्रुते[३८] । सर्वतीर्थमये पूते स्नानात् कोटिगुणं फलम् ॥१०३॥
सर्वतीर्थमया नद्यः सर्वदेवमयो हरः । तासां सुसङ्गमे नित्यममरैः स्नायते समम् ॥१०४॥
देवदेवः स्वयं तत्र तिष्ठति प्रमथैः सह । देवतीर्थमिति प्रोक्तं तस्मात्सर्वफलप्रदम् ॥१०५॥
पृथिव्यां यानि तीर्थानि सन्ति फलप्रदानि च । कोटिकोटिगुणं तेभ्यः फलं स्नानेन लभ्यते[३९] ॥१०६॥
नवम्यां पूर्णमास्याञ्च द्वादश्यामष्टमीदिने[४०] । सङ्क्रान्तिषु तथा षष्ठ्यामेकादश्याञ्च पर्वसु[४१] ॥१०७॥
स्नातव्यं सज्जनैर्धीमन्[४२] गण्डकीषु क्रमात् सदा । विज्ञाय तिथिभावञ्च[४३] कोटिकोटिगुणं फलम् ॥१०८॥
शृणु कश्चित्पुरा मुक्तः पत्नीपुण्येन भूमिपः[४४] । सङ्गमे स्नानतः पूते कृष्णात्रिशूलगङ्गयोः ॥१०९॥
आसीत्सारस्वतीपुर्यां रूपकेतुर्नृपोत्तमः । तस्य भार्ये समास्तां द्वे कामप्रभा च पद्मिनी ॥११०॥
पद्मिनी सुन्दरी श्रेष्ठा विदर्भाधिपतेः सुता । रूपकेतुप्रियाऽजस्रं प्राणैरपि गरीयसी ॥१११॥
कामप्रभा विरूपाऽऽस्या छत्ररूपाऽधिपात्मजा । रतिक्रीडाविनिर्मुक्ता प्रियेण दुःखभागिनी ॥११२॥
तस्याऽऽस्यं प्रेक्ष्यते नैव रमणेन[४५] कदाचन । पृथक् शैय्या सुदुःखार्त्ता प्रियभोगैर्विवर्जिता ॥११३॥
नीत्वैवं कतिचिद् वर्षान् गृहाय प्रस्थिता पितुः[४६] । मार्गं सख्या समं यान्त्या बभूव पान्थसङ्गमः[४७] ॥११४॥
यूयं भो क्वाऽऽगताः पान्था इति प्रश्नवती मुहुः । देवघट्टे वयं स्नातुं गच्छाम इत्यवर्णयन्[४८] ॥११५॥

---

हे अगस्त्य मुनि ! सबै नदी मिलेको देवघाट भन्ने तीर्थ सबै तीर्थमा पवित्र तीर्थ मानिन्छ। त्यहाँ स्नान गर्नाले करोडौं गुणा फल मिल्छ। नदीहरू सबै तीर्थहरू हुन् र सबै देवता शिवस्वरूप हुन् र नदीको सङ्गममा सधैं देवताहरूले स्नान गर्दछन् । देवताका पनि देवता भएका भगवान् शङ्कर प्रमथ आदि गरिएका गणहरूलाई साथमा लिएर त्यहाँ बस्नुहुन्छ, त्यसैले सम्पूर्ण फल दिने देवघाटलाई देवतीर्थ भनिएको छ ॥१०३–१०५॥

पृथ्वीमा जति पनि पुण्यदायक तीर्थहरू छन्, तीभन्दा करोडौं गुणा बढी फल देवघाटमा स्नान गर्नेहरूलाई प्राप्त हुन्छ । नवमी, पूर्णिमा, द्वादशी, महाष्टमी, सङ्क्रान्ति, षष्ठी र एकादशीका दिन विद्वान् मानिसले ती गण्डकीहरूमा तिथिको भाव अनुसार बुझेर स्नान गर्‍यो भने करोडौं करोड गुणा बढी फल पाउँछ ॥१०६–१०९॥

कृष्णा गण्डकी र त्रिशूली गङ्गाको पवित्र सङ्गममा पत्नीको असल कर्मले गर्दा अघि कुनै राजा मुक्त भएका थिए । सारस्वत नाम गरेको शहरमा रूपकेतु भन्ने कुनै राजा थिए, तिनका कामप्रभा र पद्मिनी भन्ने दुईवटा रानी थिए । अत्यन्त सुन्दर विदर्भ राजाकी छोरी पद्मिनी रूपकेतु राजाकी प्राणभन्दा पनि प्यारी थिइन् । कामप्रभा रूप नभएकी, छत्ररूप देशका राजाकी छोरी थिइन् ॥११०–१११॥

पतिबाट रतिक्रीडामा वञ्चित ती रानी दुःख भोगेर बसेकी थिइन् । तिनको मुख पतिले कहिल्यै हेर्दैनथे । दुःखले पीडित भएर छुट्टै सुत्थिन्, प्रियभोग्य विषयबाट उनी वर्जित थिइन् । केही समयपछि सङ्गिनीहरूका साथ बाबुको घर जान लाग्दा बाटोमा धेरै मानिसहरूसँग तिनको भेट भयो । तपाईंहरू यो बाटो कहाँ जानुहुन्छ ? भनेर उनले बारम्बार प्रश्न गरिन् । हामी देवघाट स्नान गर्न जान्छौं भनेर बटुवाहरूले बताए ॥११२–११५॥

---

३८. उदाहृते इति न.सं.पु.पाठः ।
३९. स्नात्वा तत्र प्रलभ्यते इति न.सं.पु.पाठः ।
४०. नवमी पूर्णिमा चैव द्वादशी च महाष्टमी इति न.सं.पु.पाठः ।
४१. संक्रान्तिश्च तथा षष्ठी एकादशी च तासु वै इति न.सं.पु.पाठः ।
४२. स्नातव्यं पण्डितैर्धीमन् इति न.सं.पु.पाठः ।
४३. ज्ञात्वा हि तिथिभावञ्च इति न.सं.पु.पाठः ।
४४. पत्नीसुकृतिना नृपः इति न.सं.पु.पाठः ।
४५. पतिनापि इति न.सं.पु.पाठः ।
४६. नीत्वैवं कश्चिदब्दान्ते प्रत्यागते पितुर्गृहे इति न.सं.पु.पाठः ।
४७. सख्या समञ्च सा मार्गे लोकैः समागमोऽभवत् इति न.सं.पु.पाठः ।
४८. इति वर्णिताः इति न.सं.पु.पाठः ।

व्रजामि तत्र संस्नातुं भवद्भिः सह सङ्गमे[४९]। इत्येवं सम्मतिं[५०] कृत्वा गण्डकीसङ्गमं ययौ ॥११६॥
देवघट्टे च सा सस्नौ तीर्थे मकरगे रवौ[५१]। लोकैः सह विरूपाऽसौ सुन्दरास्याभिलाषिणी[५२] ॥११७॥
निष्कास्य मुद्रिकां रौप्यां पाथेयं यच्च सम्भवम्। विप्रेभ्यः प्रददौ प्रोच्य[५३] प्रीयतां शङ्करस्त्विति ॥११८॥
उषित्वा तन्निशायां सा प्रातः स्नाता ययौ गृहम्। मातरं पितरञ्चाऽपि जगाद[५४] भर्तृचेष्टितम् ॥११९॥
समाश्वास्य सुतां सद्यः पितरौ समपालयन्। मधुस्रवैर्वचोभिश्च समाश्वस्ता वभूव सा[५५] ॥१२०॥
दिव्यरूपाऽभवत्साऽपि षण्मासान्ते पितुर्गृहे। सौन्दर्याद् रूपकेतुश्च[५६] भार्यां स्वामानयद् गृहम् ॥१२१॥
तत्पुण्यप्रभया राज्ञी दधाराऽतिवराननम्। प्रार्थ्यमानं हृदा यूनां तदीक्षाविस्मृतात्मनाम्[५७] ॥१२२॥
कतिचिद्दिवसे राजा चाऽद्राक्षीत्तां सुसुन्दरीम्। हर्म्योपरि गवाक्षस्थामीक्षमाणां प्रभावतीम् ॥१२३॥
कम्बुग्रीवां शशाङ्कास्यां[५८] मृगशावकलोचनाम्। उत्तुङ्गस्तनरम्यां तां सुभ्रूं स्मरशरासनाम् ॥१२४॥
तप्तकार्त्तस्वराभाङ्गीं रामामीषत्स्मिताननाम्। वासोऽलङ्कारशोभाढ्यां द्वितीयां स्मरवल्लभाम् ॥१२५॥
कामप्रभां समालोक्य मुमोह नृपतिर्भृशम्। समुत्तीर्णव्यथो हर्म्यं प्रिया यत्र ययौ द्रुतम् ॥१२६॥
द्वाररोधकपाटान्तःस्थगितश्चाऽऽह्वयत्प्रियाम्। कपाटोद्घाटनं कान्ते प्रवेशाय विधेहि मे[५९] ॥१२७॥
निशम्य वचनं राज्ञः कामार्तिगद्गदस्वरम्[६०]। कामप्रभा तदाऽवोचद्वचनं माक्षिकस्रवम्[६१] ॥१२८॥

---

तपाईंहरू जाने ठाउँमा हामी पनि नुहाउन सँगै जान्छौं भन्ने सल्लाह गरेर ती रानी गण्डकीको सङ्गममा स्नान गर्न गइन्। मकरसङ्क्रान्तिका दिन रूप नभएकी ती कामप्रभाले सुन्दर मुख बनोस् भन्ने कामना गरेर अरूले जस्तै गरी त्यहाँ स्नान गरिन्। अनि तिनले हातको चाँदीको औंठी फुकालिन्। त्यो औंठी र बाटोका लागि ल्याएको सामल पनि भगवान् शङ्कर प्रसन्न हुनुहोस् भनी ब्राह्मणलाई दान गरिन्। त्यसपछि त्यो रातभरि त्यहीं बसेर भोलिपल्ट बिहान सबेरै स्नान गरेर कामप्रभा माइत गइन्। उनले आमाबाबुलाई आफ्नो पतिको क्रियाकलाप बताइन्, बाटोमा भएको वृत्तान्त समेत बयान गरिन् ॥११६-११९॥

बाबुआमाले छोरीलाई सम्झाएर पाले। यसरी नै मह चुहिएलाजस्तो वचन बोलेर तिनलाई आश्वासन दिए। माइतमा बसेको छ महिनाभित्रै कामप्रभा अत्यन्त सुन्दरी बनिन्। रानीको सौन्दर्य थाहा पाएर रूपकेतु राजाले उनलाई फेरि आफ्नो महलमा ल्याए। त्यस नदीमा स्नान गरेको पुण्यको प्रभावले गर्दा रानीको मुख अत्यन्त सुन्दर भयो। तिनलाई देख्ने नवयुवकको मन खिचिन थाल्यो। केही दिनपछि रूपकेतु राजाले ती रानीलाई अत्यन्त सुन्दरी देखे। दरबारमाथि झ्यालमा बसेर हेरिरहेकी अत्यन्त तेजिली, शङ्खको जस्तो घाँटी, चन्द्रमाको जस्तो मुख, मृगको बच्चाको जस्तो आँखा, अग्ला स्तनले गर्दा सुशोभित, सुन्दर भृकुटीले युक्त र कामदेवको बाणको आसनजस्तै सुन्दरी देखिन्थिन् ॥१२३-१२४॥

तताएको सुनको जस्तो पहेँलो अङ्ग भएकी, हँसिलो अनुहार परेकी, लुगा र गहनाले सुशोभित भएकी, कामदेवकी अर्की पत्नी नै जस्ती कामप्रभालाई देखेर राजा अत्यन्त मोहित भए। सम्पूर्ण पीडाबाट मुक्त भएर जहाँ पत्नी बसेकी थिइन्, त्यसै घरमा गए। ढोकाको खापा बन्द हुनाले भित्र जान रोकिएका राजाले ती रानीलाई भने – हे सुन्दरी ! म भित्र आउँछु, ढोका खोल। राजाको कामले पीडित भएको गद्गद बोली सुनेर त्यसबखत कामप्रभाले मह नै चुहाउने खालको अत्यन्त मीठो बोलीमा भनिन् ॥१२५-१२८॥

---

४९. भवन्तो यत्र सङ्गमाः इति न.सं.पु.पाठः।
५०. सम्मतम् इति न.सं.पु.पाठः।
५१. मकरस्थे रवौ सस्नौ तीर्थे देवसमूहके इति न.सं.पु.पाठः।
५२. सुन्दरास्यं प्रोचती इति न.सं.पु.पाठः।
५३. प्रोक्त्वा इति न.सं.पु.पाठः।
५४. पितुरवर्णयस्सा तं मातरम् इति न.सं.पु.पाठः।
५५. साश्वस्था चैवमेव सा इति न.सं.पु.पाठः।
५६. सौन्दर्यरूपतो भूयो इति न.सं.पु.पाठः।
५७. तदीक्षमुददेहिनाम् इति न.सं.पु.पाठः।
५८. हे चन्द्रास्याम् इति न.सं.पु.पाठः।
५९. कुरु प्रवेशनाय मे इति न.सं.पु.पाठः।
६०. कामार्तगद्गदोदितम् इति न.सं.पु.पाठः।
६१. हि मधुस्रवम् इति न.सं.पु.पाठः।

कामप्रभोवाच

राजन् गच्छ प्रिया यत्र पद्मिनी सुन्दरी वरा। रूपसौन्दर्यसंयुक्ता रतिभावरसैर्युता ॥१२९॥
उज्झिताऽहं सदा राजन् भवता बहिरालये। किं स्यात् प्रयोजनं पुष्पे निर्माल्ये षट्पदां यथा ॥१३०॥
पत्यम्बुभृत्तोयविशोषकोषनिःसम्भवानङ्गरतिप्रशुष्कः।
किन्ते जनोऽयं प्रकरोति कामं यातु प्रियां तां मनसा गरिष्ठाम्[६२] ॥१३१॥

रूपकेतुरुवाच

मा मैवं वद भो देवि दैवेन[६३] वञ्चिताय मे। अतः परं प्रिये वक्ष्ये वचनं शृणु सुन्दरि ॥१३२॥
दैववञ्चितदेहेन मया त्वं वञ्चिता पुरा। नाऽद्यादि वञ्च्यसे कान्ते प्राणैरपि धनैर्ध्रुवम् ॥१३३॥
नाऽद्यतस्त्वां प्रिये त्यक्ष्ये नामोचितगुणालये[६४]। दासत्वेनाऽऽचरिष्यामि त्यक्त्वा ते[६५] जगतां धुरम् ॥१३४॥
यावज्जीव्यत्ययं देहस्तावत्त्वां नैव मुञ्चति। परित्यज्योत्तमावामाः कान्ते सत्यं[६६] वदामि ते ॥१३५॥
एवं शपथमाकर्ण्य कामप्रभा प्रियस्य च। कपाटोद्घाटनं चक्रे[६७] विमुच्यार्गलमाशु च ॥१३६॥
प्रविवेश नृपः कोष्ठं यत्र कान्ता रहः स्थिता[६८]। आलिङ्गनोत्सुको राजा प्रावोचन्मधुरं वचः ॥१३७॥

रूपकेतुरुवाच

भ्रूकार्मुकेरिताक्षाशुगभिन्नहृन्मृगे मयि[६९]। रतिकथामृतेनाशु कृपया सिञ्चनं कुरु[७०] ॥१३८॥

---

कामप्रभाले भनिन् – हे महाराज ! जहाँ रूप र सौन्दर्यले युक्त भएका भोगविलासको रसले सम्पन्न पद्मिनीहरू बसेका छन्, त्यसै ठाउँमा जानुहोस्। हे महाराज ! हजुरले सधैं मलाई घरबाट बाहिर नै फ्याँक्नुभएको थियो, ओइलाएको फूलमा भ्रमराको के महत्त्व हुन्छ ?। पतिरूपी बादलको जलरूपी ढुकुटी सुकेको हुँदा भोग विलासको मात्रा असम्भव भई शुष्क अवस्थामा पुगेको यो मानिसले हजुरको कुन इच्छालाई पूर्ण गर्न सक्छ ? त्यसैले मभन्दा बढी मन परेकी रानी भएको ठाउँमा जानुहोस् ॥१२९-१३१॥

रूपकेतुले भने – हे महारानी ! म भाग्यले ठगिएको छु, मलाई यसो नभन। हे प्रिये! अब उप्रान्त मेरो कुरा सुन्ने गर। हे सुन्दरी ! अघि मैले तिमीलाई ठगेको थिएँ, अबदेखि हे प्रिये ! प्राण तथा धनमा पनि म तिमीलाई ठग्नेछैन ॥१३२-१३३॥नाम अनुसारको काम भएकी तिमीलाई आजदेखि म छोड्दिन, संसारको भारलाई छोडेर दासजस्तै आचरण गर्नेछु। जहाँसम्म यो शरीर रहन्छ, त्यहाँसम्म उत्तम स्त्रीजातिहरूलाई छोडेर भए पनि यो शरीरले तिमीलाई छोड्नेछैन। हे प्रिये ! म तिमीलाई सत्य कुरा भन्छु। पतिको यस्तो क्रिया खाएको सुनेर कामप्रभाले तुरुन्त आग्लो झिकेर ढोका खोलिदिइन्। जहाँ पत्नीको एकान्त स्थल थियो, त्यसै कोठामा राजा प्रवेश गरे, आलिङ्गनका लागि उत्कण्ठित भएका राजाले मीठो बोलीमा भने ॥१३४-१३७॥

रूपकेतुले भने – आँखीभौंरूपी धनुषले चञ्चल नेत्ररूपी बाण चलाउने हे प्रिया ! छातीमा बाण लागेर मृगजस्तो भएको मलाई कृपा गरेर रतिकथारूपी अमृतले तुरुन्त सेचन गर ॥१३८॥

---

६२. यातु प्रिया या मनसा गरिष्ठा इति न.सं.पु.पाठः।
६३. मा मैवं कथ्यसे देवि दैवेन इति न.सं.पु.पाठः।
६४. युक्तनामाभिधानके इति न.सं.पु.पाठः।
६५. दासत्वेन चरिष्ये ते त्यक्त्वा ताम् इति न.सं.पु.पाठः।
६६. त्यक्तोत्तमाबलाः कान्ते सत्यं सत्यम् इति न.सं.पु.पाठः।
६७. कृपायेद् घाटयामास इति न.सं.पु.पाठः।
६८. कान्तारहोद्भुतम् इति न.सं.पु.पाठः।
६९. मृगाय ते इति न.सं.पु.पाठः।
७०. सिञ्च कृपाञ्च मे कुरु इति न.सं.पु.पाठः।

स्कन्द उवाच

एवं क्रीडारसे राजा सम्बोध्य शपथैश्च ताम् । क्रीडयामास[७१] वै शश्वद्यथाकामं मुदा चिरम् ॥१३९॥
दण्डनीतिप्रजारक्षां खिन्नोऽपि वनितापरः । सन्त्यज्य सततं राजा रेमे तया समं सुखम् ॥१४०॥
दानधर्मैर्विहीनोऽसौ कञ्चित्कालं निनाय तम् । पञ्चत्वं प्राप्तवाँश्चाऽपि साऽभवदनुगामिनी ॥१४१॥
आदाय शिवदूतास्तां याने व्योम्नि प्रचक्रिरे । ताडयित्वा च ते याम्याश्चाऽधो नेतुं हि तत्पराः[७२] ॥१४२॥
आलोक्य तादृशं कान्तं कामप्रभाऽऽतुरा भृशम्[७३] । अवोचत्किल याम्येभ्यः प्रार्थयन्ती मधूक्तिभिः[७४] ॥१४३॥

कामप्रभोवाच

याम्या नमोऽस्तु वः शश्वत् क्षन्तव्यमधुना प्रभो । नैवं ताडय दीनं मे भर्त्तारं कोमलं वपुः ॥१४४॥
शैवा[७५] नमोऽस्तु वो नित्यं क्षन्तव्यो मेऽपराधकः । पतिमास्थाय याने मे नयतारं[७६] मया सह ॥१४५॥

शिवदूता ऊचुः

मैवं वद सुकल्याणि पापिने पतये हृदा[७७] । आजन्मकिल्बिषैर्युक्तो लप्स्यते नारकीं गतिम्[७८] ॥१४६॥
गण्डक्याः सङ्गमे तीर्थे देवघट्टे जलाप्लवात् । प्राप्स्यसे त्वं महापुण्यात्[७९] सुकृतिनां गतिं पराम् ॥१४७॥

कामप्रभोवाच

शैवा नमोऽस्तु वो भूयः प्रियस्य सहगामिनी । तारयिष्यामि भर्तारं केनोपायेन तद्वद ॥१४८॥

---

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! यसरी राजाले रानीसँग प्रतिज्ञा गरी अनेक किसिमका क्रीडा गरेर धेरै वर्षसम्म सहर्ष कामभोग गरे । दण्डनीति आदि प्रजाको रक्षा गर्ने कामलाई छाडेर स्त्रीमा नै दत्तचित्त हुँदै चन्द्रकेतु राजा ती रानीका साथमा आनन्दसित क्रीडा गर्न थाले । दान तथा धर्म नगर्ने राजा त्यसैगरी केही समय बिताएर मरे । ती रानी पनि राजा सँगसँगै सती गइन् । शिवजीका दूतहरू आएर तिनलाई यानमा हाल्न तयार भए । त्यसैगरी यमराजका दूतहरू पनि तिनलाई मुड्ग्राले हिर्काएर नरक लैजान तयार भए । आफ्नो पतिलाई त्यस अवस्थामा रहेको देखेर कामप्रभाले दृढ हुँदै मीठो बोली बोलेर यमराजका दूतहरूसित भनिन् ॥१३९-१४३॥

कामप्रभाले भनिन् – हे यमदूत हो ! हजुरहरूलाई हाम्रो बारम्बार नमस्कार छ । हे प्रभु ! अहिले हामीलाई क्षमा दिनुहोस्, मेरो पतिको कोमल शरीरमा यसरी नपिट्नुहोस् ॥ हे शिवजीका दूत हो ! तपाईंहरूलाई नमस्कार छ, मेरो अपराध क्षमा गर्नुहोस् । मेरा पतिलाई यानमा राखेर मसितै लैजानुहोस् ॥१४४-१४५॥

शिवजीका दूतले भने – हे कल्याणी ! जन्मदेखि नै पापले युक्त भएको अधोगतिमा लैजानुपर्ने तिम्रो पतिलाई यानमा राख्ने कुरा नगर ॥ गण्डकीको सङ्गमस्थल देवघाटको तीर्थमा स्नान गरेको हुँदा त्यही पुण्यको प्रभावले तिमी उत्तम गति प्राप्त गर्दैछ्यौ ॥१४६-१४७॥

कामप्रभाले भनिन् – हे शिवदूत हो ! तपाईंहरूलाई हाम्रो फेरि नमस्कार छ । पतिकी सहगामिनी बनेर के गरी म उहाँलाई तार्न सक्छु? त्यो उपाय भन्नुहोस् ॥१४८॥

---

७१. कामयामास इति न.सं.पु.पाठः ।
७२. याम्यास्ते मुद्गरैस्ताड्य चाधोऽतीतु तथा पुनः इति न.सं.पु.पाठः ।
७३. कामप्रभा दृढातुरा इति न.सं.पु.पाठः ।
७४. प्रार्थयन्मधुरोक्तिभिः इति न.सं.पु.पाठः ।
७५. शैव्या इति न.सं.पु.पाठः ।
७६. नय परं इति न.सं.पु.पाठः ।
७७. कदा इति न.सं.पु.पाठः ।
७८. युक्तो ह्यधोगतिम् इति न.सं.पु.पाठः ।
७९. त्वं लभिष्यति तत्पुण्यात् इति न.सं.पु.पाठः ।

शैवा ऊचुः

अवश्यमेव भोक्तव्यं फलं[८०] च पापपुण्ययोः। सहगमनजो धर्मस्तवैव स्यात् प्रियस्य न[८१] ॥१४९॥
यदि त्वं यातनाकुण्डात्[८२] तितीर्षुः खलु वल्लभम्। धर्मं प्रयच्छ तेऽर्धाङ्ग[८३] प्रियाय यत्कृतं त्वया ॥१५०॥
यद्येवं कुरुषे[८४] देवि त्वया सह गमिष्यति। एवमेवोपकारः स्यादुपायोऽन्यो न विद्यते[८५] ॥१५१॥

स्कन्द उवाच

स्वीकारं सा ध्रुवं कृत्वा प्रिया यत्सुकृतं स्वकम्। कुशोदकं समादाय तस्यार्धं[८६] सा ददौ स्वकम् ॥१५२॥
व्यनयन् परमं धाम शैवास्तं प्रियया सह[८७]। भुक्त्वा कोटिसमं सौख्यं ततोऽभवत् क्षितौ नृपः ॥१५३॥

दैत्याश्च तत्रैव तपः प्रचक्रुर्लब्ध्वा वराँस्तान्[८८] द्रुहिणाच्च देवात्।
विद्रुत्य चक्रुस्त्रिदिवस्य[८९] राज्यं रुद्रश्च विष्णुश्च जघान दैत्यान् ॥१५४॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे उमाव्रते सर्वगण्डक्युत्पत्त्यां देवघट्टमाहात्म्यं नाम चतुश्चत्वारिंशत्तमोऽध्यायः ॥४४॥

---

शिवका दूतहरूले भने – आफूले गरेका पाप र पुण्यको फल अवश्य भोग्नुपर्छ। सहगमनको धर्म तिम्रो हो, पतिको होइन्। यदि तिमी यातनाको कुण्डबाट पतिलाई तार्न चाहन्छ्यौ भने तिमीले आफूले जुन धर्म गरेकी छ्यौ, त्यसको आधा पतिलाई देऊ। यदि यसो गर्छ्यौ भने तिम्रा पति तिमीसितै जान पाउँछन्। यसरी यिनको उपकार हुन्छ, अर्को कुनै बाटो छैन ॥१४९-१५१॥

कार्तिक स्वामीले भन्नुभयो – यो कुरा स्वीकार गरेर कामप्रभाले आफूले गरेको धर्मको आधा कुश, जल समातेर पतिलाई दिइन्। शिवका दूतहरूले पतिलाई साथमै राखेर उनलाई उत्तम शिवलोकमा लगे। करोडौं वर्षसम्म सुखभोग गरेपछि रूपकेतु पृथ्वीमा राजा भए। हे अगस्त्य मुनि ! त्यही गण्डकीको तीरमा दैत्यहरूले तपस्या गरे। ब्रह्माबाट उत्तम वर पाए। देवताहरूलाई स्वर्गबाट निकाली त्यहाँ राज्य गरे, अनि रुद्र र विष्णु भगवान्‌ले दैत्यहरूलाई मार्नुभयो ॥१५२-१५४॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गत हिमवत्खण्डको गौरीव्रतको प्रसङ्गमा सबै गण्डकीहरूको उत्पत्तिविषयको देवघाटमाहात्म्यनामक चौवालिसौं अध्याय पूर्ण भयो।

---

८०. तद्धि भोक्तव्यं स्वकृतम् इति न.सं.पु.पाठः।
८१. सहगमनधर्मं यत्तवैवं न प्रियस्य च इति न.सं.पु.पाठः।
८२. यातने कुण्डे इति न.सं.पु.पाठः।
८३. तेऽर्द्धाङ्गम् इति न.सं.पु.पाठः।
८४. यद्येवञ्वरसे इति न.सं.पु.पाठः।
८५. स्यान्नान्यदुपाय इष्यते इति न.सं.पु.पाठः।
८६. कृतार्द्धम् इति न.सं.पु.पाठः।
८७. व्यनयत्परमं शैवं शैवास्तां पतिना सह इति न.सं.पु.पाठः।
८८. वराद्यान् इति न.सं.पु.पाठः।
८९. चक्रुस्त्रिदिवम् इति न.सं.पु.पाठः।

# पञ्चचत्वारिंशोऽध्यायः

## नीलकण्ठोत्पत्तिः

### अगस्त्य उवाच

भगवन् त्वत्प्रसादाद्वै श्रुतो यथोद्भवो मया[1]। श्रुतं तद् गण्डकीनाञ्च माहात्म्यं हि विशेषतः[2] ॥१॥
नीलकण्ठ इति प्रोक्तो भवताऽभूत् कथं च सः[3]। तथा त्रिशूलगङ्गा च धर्मधाराऽभवत् कथम्[4] ॥२॥
तपःस्थानसुरान् देवाः जग्मुस्तत्र कथं पुनः। श्रोतुमिच्छामि तत्सर्वं वद मे शङ्करात्मज ॥३॥

### स्कन्द उवाच

अवश्यं ते प्रवक्ष्यामि शृण्वेकाग्रमना मुने। यद्वृत्तान्तं पुराऽभूच्च देवासुरश्रमोद्भवम् ॥४॥
कल्पान्ते प्रलयं याता देवा वै सहसा पुनः। राक्षसान् तान् विहायैवाऽवशिष्टः क्षीरसागरः ॥५॥
पारिजातं सुधां लक्ष्मीं ऐरावतं हयान्धनुः। सर्वं संहृत्य[5] सन्तस्थौ क्षीरार्णवश्चिरं पुरा ॥६॥
सृष्ट्यन्तरे च धातारं[6] देवाः सम्भूय चाऽब्रुवन्। ब्रह्मवक्त्र वयं कुर्मो मथनं चाऽम्भसां निधेः[7] ॥७॥
विमृश्यैतद् घटोद्भूत देवाश्च दानवा मिथः[8]। मिलित्वा प्रययुस्तीरं विस्तृतं चाऽम्भसां निधेः[9] ॥८॥
पूर्वं पयोनिधेः क्षीरमथनं ते चिकीर्षवः[10]। देवासुराश्च सम्भूयाऽकुर्वन्[11] दण्डञ्च मन्दरम् ॥९॥
ममन्थुरर्णवं देवाः कृत्वा रज्जुञ्च वासुकिम्। दण्डञ्च मन्दरं दैत्या विधाय विष्णुहस्तयोः ॥१०॥

---

### अध्याय - ४५

### भगवान् नीलकण्ठको उत्पत्तिवर्णन

अगस्त्य मुनिले भन्नुभयो – हजुरको कृपाले गर्दा मैले सातवटा गण्डकीको उत्पत्ति र विशेष गरी तिनीहरूको माहात्म्य सुनें। हजुरले नीलकण्ठ भन्नुभयो, उहाँको उत्पत्ति कसरी भयो ? फेरि त्रिशूलगङ्गा र धर्मधाराको उत्पत्ति कसरी भयो ?। तपस्या गर्न लागेका राक्षसहरू भएको ठाउँमा फेरि देवताहरू कसरी गए ? हे कार्तिक स्वामी ! यी सबै कुरा म सुन्न चाहन्छु ॥१-३॥

कार्तिक स्वामीले भन्नुभयो – देवता र राक्षसहरूको परिश्रमसँग सम्बद्ध अघि एउटा घटना घटेको थियो। हे अगस्त्य मुनि ! त्यो म बताउँछु, सावधान भएर सुन्नुहोस्। कल्पको अन्त्यमा देवताहरू ती राक्षसहरूलाई त्यसै ठाउँमा छोडेर लीन भए। क्षीरसागरमात्र बाँकी रह्यो। पारिजात, अमृत, लक्ष्मी, ऐरावत, घोडा र धनुषलाई समेटेर धेरै समयसम्म क्षीरसागर चुप्प लागेर बस्यो। अर्को कल्पमा चतुर्मुख ब्रह्माजीको शक्ति र सामर्थ्य जानेका देवता र दानवहरू मिलेर ब्रह्मासँग भने – हामी अब समुद्र मन्थन गर्छौं। हे अगस्त्य मुनि ! परस्परमा कुराकानी गरेर देवता र दैत्यहरू जम्मा भई क्षीरसागरको तीरमा गए। क्षीरसागर मथन गर्ने इच्छा लिएर देवता र राक्षसहरूले मिलेर मन्दराचल पर्वतलाई मदानी बनाए। वासुकिको नेती बनाए, मन्दराचलको मदानी विष्णुको हातमा अड्याएर देवता र दानवहरूले समुद्र मथन गरे ॥४-१०॥

---

१. श्रुतं यथोद्भवं मया इति न.सं.पु.पाठः।
२. सप्तानां गण्डकीनाञ्च तन्माहात्म्यं विशेषतः इति न.सं.पु.पाठः।
३. ख्यातो भवताभूच्च तत्कथम् इति न.सं.पु.पाठः।
४. तथा त्रिशूलगङ्गेति धर्मधारेति तत्पुनः इति न.सं.पु.पाठः।
५. संहृत्य ते च इति न.सं.पु.पाठः।
६. सृष्ट्यन्तरे ततो धातो इति न.सं.पु.पाठः।
७. ब्रह्मवक्त्राविजानन्तः कुर्वामो मथनं निधिम् इति न.सं.पु.पाठः।
८. विमृष्यैव घटोद्भूत देवासुराः परस्परम् इति न.सं.पु.पाठः।
९. क्षीरार्णवस्य सर्वशः इति न.सं.पु.पाठः।
१०. चिकीर्षुमथनं पूर्वं क्षीरं पयोनिधेर्भृशम् इति न.सं.पु.पाठः।
११. देवासुरा ये सम्भूय कृत्वा इति न.सं.पु.पाठः।

तस्मात्समुद्गतां लक्ष्मीं विष्णुर्जग्राह सस्पृहम्[१२]। ततः सप्तहयान् सूर्यः[१३] पारिजातं तथा वृषा ॥११॥
ऐरावतञ्च शक्रोऽसौ धनुश्च मम सम्मतम्। जगृहुरमृतं दैत्या बलात्संसदि सत्वरम् ॥१२॥
तस्मात्क्ष्वेडः समुद्भूतः करालः क्षोभकस्ततः[१४]। सर्वलोकं ग्रसन्त[१५] ते ददृशुरमराः सुराः ॥१३॥
लोकानां क्षोभकं प्रेक्ष्य[१६] शरणञ्चाऽभिदुद्रुवुः। देवासुराश्च रुद्रस्य त्यक्त्वा मन्थं भयातुराः ॥१४॥
स्वशरणागताँल्लोकान् शरणदः स रक्षति। इति कृत्वा ययुस्ते वै प्रोचू रुद्राय तद्भयात् ॥१५॥

देवासुरा ऊचुः

नमस्ते शिपिविष्टाय शरण्याय[१७] च शूलिने। सर्वभूतदयेशाय लोकानां पतये नमः ॥१६॥
रक्ष रक्ष भयात् क्ष्वेडादस्माल्लोकप्ररक्षक। तेन दग्धान्महादेव शरणञ्चाऽऽगतानिह[१८] ॥१७॥

स्कन्द उवाच

श्रुत्वा तेषां वचो रुद्रस्तद्भयाद् गद्गदस्वरम्[१९]। मा भीयन्तां सुरा दैत्याः प्रतीकारं करोमि तत् ॥१८॥
एवमुक्त्वा महादेव आश्वासयत्सुरासुरान्। ददर्श गरलं भीष्मं विषज्वालांशुमालिनम् ॥१९॥
देवान् द्रुत्या[२०] समायातं नीलाञ्जनसमप्रभम्। अतिभयङ्करं तीक्ष्णं प्रेक्ष्य रुद्रश्चुकोप च ॥२०॥
सर्वलोकहितायाऽऽशु स्वमात्मानं विदन्नपि। आदाय पाणिना क्ष्वेडमग्रसीत्त्वरितं विभुः ॥२१॥
कण्ठे क्ष्वेडो[२१] महानीलस्तस्थौ रुद्रस्य तत्क्षणात्। तस्य कुक्षौ प्रविष्टो न[२२] जिह्वायाश्च न निर्गतः ॥२२॥

---

समुद्रबाट निस्किएकी लक्ष्मीलाई विष्णुले लिए, घोडालाई सूर्यले लगे र कल्पवृक्षलाई इन्द्रले लिए। ऐरावत इन्द्रले लगे, धनुष मैले लिएँ। त्यस देवदानवको सभामा दैत्यहरूले जबर्जस्ती गरेर अमृत लगे। त्यसपछि समुद्रबाट डरलाग्दो हलाहल विष निस्कियो। त्यसले सम्पूर्ण लोकलाई नै क्षुब्ध तुल्याएर ग्रस्त पार्न लागेको देवता तथा दानवहरूले देखे। लोकलाई क्षुब्ध तुल्याउने त्यो विष देखेर देवता तथा दानवहरू डरले समुद्र मथन गर्न छाडेर रुद्रको शरणमा गए। आफ्ना शरणमा आएका शरणार्थीलाई शरण दिने भगवान् शिवले शरण दिनुहुन्छ भन्ने ठानेर भयभीत देवता र राक्षसहरूले गएर रुद्रसँग भने ॥११–१५॥

देवता र राक्षसहरूले भने – हे शरणदायक ! शिपिविष्ट ! त्रिशूल लिएर सम्पूर्ण प्राणीहरूमाथि दया गर्ने महेश्वर ! लोकपति ! हजुरलाई नमस्कार छ। हे महादेव ! हे लोकरक्षक ! हलाहल विषले पोलेर शरणमा आएका हामीलाई रक्षा गर्नुहोस् ॥१६–१७॥

कार्तिक स्वामीले भन्नुभयो – हलाहल विषको डरले गर्दा गद्गद स्वर निकालेर भनेको तिनीहरूको वचनलाई सुनेर शङ्करले भन्नुभयो – हे देवता तथा राक्षस हो ! तिमीहरू नडराओ, त्यसको प्रतीकार म गर्छु। यति भनेर भगवान् शङ्करले देवता र राक्षसहरूलाई आश्वासन दिनुभयो। त्यसपछि उहाँले अग्निज्वालाजस्तै कान्तिले युक्त डरलाग्दो विष देख्नुभयो। देवता तथा राक्षसहरूलाई लघार्दै आएको नीलो गाजलजस्तो अत्यन्त डरलाग्दो तीखो विषलाई देखेर भगवान् शङ्कर रिसाउनुभयो। विष भन्ने थाहा हुँदाहुँदै पनि सम्पूर्ण प्राणीहरूको हितका निमित्त उहाँले त्यसलाई हातले समातेर तुरुन्त पिउनुभयो। अत्यन्त नीलो वर्ण भएको त्यो विष तुरुन्त महादेवको घाँटीमा पुग्यो। पेटभित्र प्रवेश गरेन र जिब्रामा पनि बसेन ॥१८–२२॥

---

१२. सांप्रतम् इति न.सं.पु.पाठः।
१३. ततोहयान् रविः सप्तान् इति न.सं.पु.पाठः।
१४. तस्मात्क्ष्वेड समुद्भूतं करालं क्षोभकं ततः इति न.सं.पु.पाठः।
१५. ग्रसन्त इति न.सं.पु.पाठः।
१६. प्रेक्ष्य क्षोभकं लोकान् इति न.सं.पु.पाठः।
१७. शरणदाय इति न.सं.पु.पाठः।
१८. ते शरणागतानिह इति न.सं.पु.पाठः। ?रुश्र सांप्रतम् इति न.सं.पु.पाठः।
१९. गद्गदेरितम् इति न.सं.पु.पाठः।
२०. द्रुत्य इति न.सं.पु.पाठः।
२१. कण्ठमध्ये इति न.सं.पु.पाठः।
२२. प्रवेशितो न तत् कुक्षौ इति न.सं.पु.पाठः।

ददाहाऽभ्यन्तरं क्ष्वेडो रुद्रस्याऽपि महात्मनः। अक्षोभयन्मनो भूय इन्द्रियाणि च[२३] सत्वरम् ॥२३॥
कण्ठमध्ये महानीलो यतस्तिष्ठति संयतः। नीलकण्ठः इति ख्यातः सर्वलोकैश्च सन्ततम् ॥२४॥
आत्मानं विह्वलं दृष्ट्वा चिन्तति स्म क्षणं विभुः। यद्युज्जहामि चैतद्धि ग्रसिष्यति जगत्क्षणात् ॥२५॥
न स्थातव्यं मया चात्र गच्छामि हिमवद्गिरौ। यत्र तप्तं पुरा गौर्या तत्कुण्डे चाऽप्लवे द्रुतम् ॥२६॥
तत्र स्नानान्महानीलः प्रशमिष्यति साम्प्रतम्। गौर्यङ्घ्रिक्लिन्नघर्म्मे वै तस्मिँस्थास्येऽभयप्रदे [२४क]॥२७॥
इदमेव भवेत्तस्य[२४] प्रतीकारो न मेऽपरः। गच्छामि शरणं तस्य गौरीस्वेदाम्भसोऽधुना ॥२८॥

स्कन्द उवाच

एवं सञ्चिन्त्य देवेशः क्ष्वेडतापसुविह्वलः। रुद्रलोकात्समागत्य प्रययौ हिमवद्गिरौ ॥२९॥
क्ष्वेडशिखाप्रदग्धाङ्गो वेत्रपाणिः शनैः शनैः। स्कन्धे त्रिशूलमाधाय रुरोह हिमपर्वतम् ॥३०॥
यत्र कूटे हरः पूर्वं निचखान च वेत्रकम्। श्रमात्तच्च पुनस्त्यक्त्वा प्रययौ शूलपर्वतम् ॥३१॥
वेत्रप्ररोपणात्तत्र विनिःसृतं[२५] जलं शिवम्। पपात कन्दरेऽजस्त्रं वसोर्धारा इवोत्सवे ॥३२॥
दृष्ट्वा देवर्षयः सर्वे रुद्रवेत्रोद्भवां नदीम्। भक्त्या निवेद्य संसस्नुस्तस्यामागत्य तत्र वै ॥३३॥
सन्तर्प्य विधिवद्देवान् पितॄञ्जेपुः मनून् तथा[२६]। दत्त्वा दानानि विप्रेभ्यः स्वं स्वं स्थानं ययुः पुनः ॥३४॥
गन्धर्वाप्सरसः सिद्धा गुह्यकाश्च तथाऽपरे[२७]। सस्नुस्तस्यां मुदा भक्त्या स्वं स्वं स्थानं तथा ययुः ॥३५॥

---

विषले महात्मा शिवजीको पेटभित्र पनि दाह पैदा गर्‍यो, सम्पूर्ण इन्द्रिय र मनलाई पनि तुरुन्तै क्षुब्ध तुल्यायो। घाँटीको बीचमा अत्यन्त नीलो वर्ण भएको यो विष रहेको हुँदा सबै मानिसहरूले भगवान्‌लाई नीलकण्ठ भने। विह्वल भएको देखेर भगवान् शङ्करले एकछिन विचार गर्नुभयो, यदि यसलाई मैले ओकलें भने यसले तुरुन्तै सम्पूर्ण संसारलाई नष्ट गरिदिन्छ ॥१८-२५॥

त्यसैले अब म यहाँ बस्दिन, हिमालय पर्वतमा जान्छु। जहाँ पहिले पार्वतीले तपस्या गरेकी थिइन्, त्यसै कुण्डमा डुब्छु। त्यहाँ स्नान गर्‍यो भने हलाहल विष शान्त हुनेछ, त्यसैले गौरीको पाउको पसिनाबाट बनेको त्यसै अभयप्रद कुण्डमा गएर बस्छु। यही नै प्रतीकारको बाटो छ, अर्को छैन। तिनै गौरीको पसिनाबाट जन्मिएको कुण्डको शरणमा म अब जान्छु ॥२६-२८॥

कार्तिक स्वामीले भन्नुभयो – यसरी विषको तापले विह्वल भएका भगवान् शङ्करले यस्तो विचार गरेर रुद्रलोकबाट हिमालयमा आउनुभयो। विषको ज्वालाले शरीर डढेका भगवान् शङ्कर हातमा वेतका लठ्ठी र काँधमा त्रिशूल राखेर बिस्तारै-बिस्तारै हिमालयको पर्वतमा चढ्नुभयो। जुन टाकुरामा महादेवले पहिले वेत रोप्नुभएको थियो, त्यसको नाउ वेत्रकूट भयो। थकाइले गर्दा वेतलाई त्यही छोडेर भगवान् शित्रूलपर्वततिर लाग्नुभएको थियो। वेत रोपेका ठाउँबाट कल्याणदायक पानी निस्कियो। त्यो जल कुनै उत्सवमा गरिएको वसुधाराजस्तै बनेर गुफामा हामफाल्यो अर्थात् त्यसबाट वेत्रावती नदी निस्किइन्। देवता र ऋषिहरूले शिवजीको वेत्रबाट पैदा भएकी नदीलाई देखेर भक्तिपूर्वक त्यहाँ आई स्नान गरे। विधिपूर्वक देवता र पितृहरूलाई उनीहरूले तर्पण दिए, स्थिर भएर जप गरे। फेरि ब्राह्मणहरूलाई दान दिएर फेरि आ-आफ्नो स्थानमा फर्किए। गन्धर्व, अप्सरा, सिद्ध, यक्ष र त्यस्तै अरू पनि त्यहाँ आनन्द मानेर भक्तिपूर्वक स्नान गरी आ-आफ्नो स्थानमा गए। ।२९-३५॥

---

२३. सर्वेन्द्रियाणि इति न.सं.पु.पाठः।
२४. भविष्यति इति न.सं.पु.पाठः।
२४क. चाप्लवाम्यहम् इति न.सं.पु. पाठः।
२५. प्रतिसृतम् इति न.सं.पु.पाठः।
२६. सुनिश्चिताः इति न.सं.पु.पाठः।
२७. तथापराः इति न.सं.पु.पाठः।

वेत्रोद्भवा नदी श्रेष्ठा वेत्रगङ्गेति संस्मृता । गङ्गातुल्या ह्यभूत्सा वै देवासुरर्षिभिः स्तुता ॥३६॥
तस्यां स्नात्वा नरो धीमान् शिवलोके महीयते । यानेन च सुदिव्येन मुदा युक्तोऽर्कवर्च्चसा ॥३७॥
तस्यां जप्तं हुतं दत्तं तत्सर्वमक्षयं भवेत्[२८] । अधःस्थानपि सर्वान् स श्राद्धात्पितॄन् समुद्धरेत् ॥३८॥
सर्वतीर्थमयी सा स्याद्देवर्षिभिः प्रमाणिता । रुद्रवेत्रोद्भवा यस्माद्वेत्रगङ्गा फलप्रदा ॥३९॥
ततो गत्वा तदूर्ध्वं वै शूलाद्रिशिखरं विभुः । परिश्रमात् पिपासार्त्तस्तस्थौ तत्र त्रिशूलधृक्[२९] ॥४०॥
तत्रारोप्य त्रिशूलं स गङ्गां सस्मार तत्र च । नीलेनात्यन्तरं दग्धः स तृषार्तो महाविभुः ॥४१॥
त्रिशूलरोपणाच्छिद्राद् जातो गङ्गासमुद्भवः[३०] । ययौ गङ्गा सुखं रुद्रः परिश्रमं तदा जहौ ॥४२॥
त्यक्त्वा तां शूलपाणिश्च गन्तुं नीलाचले पुनः । त्रिशूलं च समुत्खात्य रुरोह चन्दनाचलम् ॥४३॥
ततो गङ्गाद्रिकूटाद्धि वेगात्पपात कन्दरे । स्वच्छकल्लोलिनी पुण्या शीतनिर्भरनिःस्वना ॥४४॥
शीकरमालिनी वेगाद् भृगुपातसुनिःसृता । विराजते तदा गङ्गा वसोर्धारा इवोत्सवे ॥४५॥
ततो देवगणाः सर्वे सिद्धा देवर्षयस्तथा । गन्धर्वाप्सरसो[३१] यक्षास्तत्राययुश्च दानवाः ॥४६॥
ब्रह्मविष्णुसुनाशीराश्चन्द्रार्कपावकानिलाः । अम्भःपतियमौ क्रव्यादाययुः त्वरितं मुदा[३२] ॥४७॥
तस्यां सस्नुर्मुदा युक्ता निमज्योन्मज्य भक्तितः । गङ्गां सम्पूज्य पूजाभिर्यथाविधि सुरासुराः ॥४८॥
दध्युर्ध्यानं ततो जेपुर्ददुर्दायान् मुदा च ते । तुष्टुवुस्त्रिविधैस्तां वै प्रार्थमानाः वरान् पुनः[३३] ॥४९॥
लब्ध्वा वरांस्ततो देवा गन्धर्वाश्चाऽप्सरोगणाः । स्वं स्वं स्थानं ययुर्भूयः स्नानात् पूतकलेवराः[३४] ॥५०॥

---

वेत्रबाट उत्पन्न भएकी ती गङ्गालाई वेत्रगङ्गा भनियो, ती गङ्गा गङ्गाजत्तिकै बनिन्। देवता, राक्षस र ऋषिहरूले तिनको स्तुति गरे। हे अगस्त्य मुनि ! त्यस नदीमा स्नान गर्नाले मानिसहरू दिव्यकालाको सूर्यको जस्तो तेजिलो यानमा चढी सहर्ष शिवलोकमा गएर ससम्मान बस्न पाउँछन्। त्यस ठाउँमा गरेको जप, हवन, दानबाट अक्षय फल प्राप्त हुन्छ। त्यहाँ श्राद्ध गर्ने मानिसले नरकमा बसेका भए पनि आफ्ना पितृहरूको उद्धार गर्छ। वेत्रगङ्गा संसारका सबै तीर्थहरूले सम्पन्न छन् अथवा सम्पूर्ण तीर्थहरूका गुणगरिमाले सम्पन्न छन् भन्ने कुरा देवता र ऋषिहरूले प्रमाणित गरेका छन्। भगवान् शिवको वेत्रदण्डबाट प्रकट हुनाले वेत्रगङ्गानामले प्रसिद्ध यी नदी स्नान, दान आदि कर्म गर्नेहरूका लागि फलदायिनी छन् ॥३६-३९॥

त्यहाँबाट माथितिर रहेको शूलाद्रि पर्वतको शिखरमा भगवान् शङ्कर जानुभयो। परिश्रम र प्यासले आत्तिएर शिवजी त्यहाँ बस्नुभयो। विषले भित्रभित्रै डढेर तिर्खाले आत्तिनुभएका भगवान्ले त्यहाँ त्रिशूल रोपेर गङ्गालाई सम्झनुभयो। त्रिशूल गाडेको हुँदा त्यसै ठाउँबाट गङ्गा पैदा हुनुभयो। गङ्गाजीले आनन्दसित शिवजीको थकाइलाई हरण गर्नुभयो। ती गङ्गालाई पैदा गराएपछि त्रिशूल हातमा लिने भगवान् शङ्करले त्रिशूल उखेली नीलाचलमा रहेको चन्दनाचलमा आरोहण गर्नुभयो। त्यसपछि त्यस पर्वतको शिखरबाट स्वच्छ तरङ्ग भएकी शीतल झरनाको आवाजले युक्त पवित्र गङ्गा हाम फालिन्। चीसो जलले युक्त भएकी र वेगसित झरनाका रूपमा झरेकी ती गङ्गा उत्सवमा वसुधाराजस्तै भएर विराजमान भएकी छन्। त्यसपछि सबै देवताहरूका गण, सबै सिद्ध, देवर्षि, गन्धर्व, अप्सरा, यक्ष र दानव त्यहाँ गए। ब्रह्मा, विष्णु, इन्द्र, चन्द्र, सूर्य, अग्नि, वायु, वरुण, यम र निर्ऋतिहरू पनि छिट्टै त्यहाँ आए ॥४०-४७॥

ती सबै देवता र राक्षसहरूले त्रिशूलगङ्गामा आनन्दसित डुबुल्की मारेर भक्तिपूर्वक स्नान गरे, विधिपूर्वक पूजा गरे। त्यसपछि उनीहरूले ध्यान गरे, जप गरे, खुसी भएर दान दिए, देवताहरूले वरहरू मागेर फेरि तीनै किसिमका भक्तिद्वारा गङ्गाको स्तुति गरे। स्नान गरेर पवित्र बनेका गन्धर्व, अप्सराका गणले सहित भएका देवताहरू गङ्गाजीबाट वरप्राप्त गरेर आ-आफ्ना स्थानमा गए ॥४८-५०॥

---

२८. लभेत् इति न.सं.पु.पाठः ।
२९. तत्र शूलधृक् इति न.सं.पु.पाठः ।
३०. गङ्गा तत्रापि चोद्भवा इति न.सं.पु.पाठः ।
३१. गन्धर्वाश्चाप्सरो इति न.सं.पु.पाठः ।
३२. क्रव्यात् समाययुश्च तत्र वै इति न.सं.पु.पाठः ।
३३. प्रार्थयन्तो वरान् पुनः इति न.सं.पु.पाठः ।
३४. स्नानात्पवित्रदेहिनः इति न.सं.पु.पाठः ।
३५. अभूत्सा इति न.सं.पु.पाठः ।
३६. प्राप्स्यन्ते च इति न.सं.पु.पाठः ।

तदादि सरितां श्रेष्ठा बभूव[३५] विश्वपावनी। रुद्रेशाराधिता यस्माद् रुद्रगङ्गेति कीर्त्तिता ॥५१॥
तस्यां कुर्वन्ति ये स्नानं धीमन्तो भक्तिपूर्वम्। सर्वपापैर्विनिर्मुक्ताः प्राप्नुवन्ति[३६] परां गतिम् ॥५२॥
स्नानमात्रञ्च कुर्वन्ति येऽपि ज्ञानविवर्जिताः। परिवारैः समं यान्ति ते स्वर्गं पापवर्जिताः ॥५३॥
दशगुणञ्च गङ्गायां स्नात्वा तस्यां फलं भवेत्[३७]। दत्तार्चनजपानाञ्च द्विसहस्रगुणं भवेत्[३८] ॥५४॥
मोहकञ्चुकमुत्सृज्य प्रावृत्य ज्ञानकञ्चुकम्। जपार्चनकरस्तस्यां मोक्षं प्राप्नोति चाऽऽशु सः ॥५५॥
कुर्वन्ति याः स्त्रियः स्नानं तस्यां धान्यं धनं सुतम्। लब्ध्वा पतिप्रिया नित्यं भवेयुः सुन्दराननाः ॥५६॥
श्राद्धं कुर्वन्ति ये तस्यां गच्छति त्रिदिवं क्षणात्। समुद्धृत्य पितॄन् स्नानाद्दश पूर्वान् दशाऽपरान् ॥५७॥
विलङ्घ्य चन्दनं शैल[३९]मगमच्च शनैः शनैः। नीलाचलनितम्बेऽसौ[४०] लोकानुग्रहकारकः ॥५८॥
ततो नीलाद्र्यधोभागे तस्थौ पुनः परिश्रमात्। क्ष्वेडक्षोभितदेहोऽसौ समारोढुमशक्तवान्[४१] ॥५९॥
संस्मृत्य धर्मधारां स गौरीस्वेदसमुद्भवाम्। क्ष्वेडतापविनाशाय शूलेनाऽद्रिं विभेद च ॥६०॥
विनिर्गत्याऽऽशु तत्स्वेदः स्वच्छः सुनिर्मलस्तदा। जाता धारास्ततस्तिस्रश्चोत्पेतुर्धर्मपर्वतात्[४२] ॥६१॥
तिस्रो धारा विराजन्ते[४३] उच्चपातैश्च[४४] निर्मलैः। गङ्गार्द्रवेत्रयोर्धाराः शम्भोर्मूर्ध्नो विनिर्गताः ॥६२॥
तस्मात् त्रिशूलगङ्गेति समाख्याता सुरासुरैः। समुद्भूता त्रिशूलात्सा त्रिधारा गाढशोभना ॥६३॥
ह्रदीभूता सानुमध्ये[४५] गङ्गा त्रिशूलभेदजा। स्फटिकाभाऽमृतस्वच्छा शिवाकाराऽतिशोभना ॥६४॥

---

किसिमका भक्तिद्वारा गङ्गाको स्तुति गरे। स्नान गरेर पवित्र भएका गन्धर्व, अप्सरा र देवताहरूले गङ्गासित वर मागेर फेरि आ–आफ्नो स्थानमा गए। त्यसै समयदेखि विश्वलाई पवित्र तुल्याउने ती त्रिशूली नदी रुद्रले आराधना गरेको हुँदा रुद्रगङ्गाको नामले प्रसिद्ध भइन्। जुन बुद्धिमान् मानिसहरूले त्यस नदीमा भक्तिपूर्वक स्नान गर्छन्, तिनीहरू सम्पूर्ण पापबाट मुक्त भएर परमगतिमा पुग्छन्। ज्ञान नभए पनि जुन मानिसले ती गङ्गामा स्नान गर्छन्, तिनीहरू पापबाट मुक्त भएर परिवारसहित स्वर्ग जान्छन् ॥५१-५३॥

त्रिशूलगङ्गामा स्नान गर्दा गङ्गामा स्नान गरेभन्दा पनि दश गुणा बढी फल मिल्छ। दान, पूजा र जप गर्‍यो भने दुई हजार गुणा बढी फल पाइन्छ। त्यस नदीमा जप तथा पूजा गर्ने मानिसले मोहरूपी चोलालाई छोडेर ज्ञानरूपी चोलो लगाई तुरुन्त मोक्ष प्राप्त गर्छ। जुन नारीहरूले त्यस नदीमा स्नान गर्छन्, तिनीहरू धन, धान्य र पुत्रादि सन्तति प्राप्त गरी सुन्दरी भएर सधैं पतिका प्रिय बन्न पुग्छन्। जसले त्रिशूलगङ्गामा स्नान गरेर श्राद्ध गर्छन्, तिनीहरू दश कुल अगाडिका पितृहरू र दश कुल पछाडिका वंशज अर्थात् २१ कुललाई उद्धार गरेर तुरुन्तै स्वर्ग जान्छन् ॥५४-५७॥

चन्दनाचल अर्थात् चन्दनवाडीलाई नाघेर लोकलाई हित गर्न चाहने भगवान् शङ्कर नीलाद्रि पर्वतको फेदमा पुग्नुभयो। त्यसपछि विषले क्षुब्ध शरीर बनेका भगवान् शङ्कर थकाइले गर्दा नीलाद्रि पर्वतको फेदीमा बस्नुभयो। उहाँ उकालो हिँड्न सक्नुभएन। उहाँले विषको ताप हटाउन गौरीको पसिनाबाट उत्पन्न भएकी धर्मधारालाई सम्झनुभयो र त्रिशूलले पहाड छेड्नुभयो।त्यसबेला तुरुन्त स्वच्छ, निर्मल पसिना धर्मपर्वतबाट निस्किएर तीन धारा भएर बग्यो। शम्भुका जटाजूटबाट प्रकट भएकी त्रिपथगा गङ्गा निर्मल तीन धारा लिएर धर्मपर्वतबाट हाम फालिन्। अत्यन्त गहिरो भएर त्रिशूलबाट निक्ली तीन धारामा बगेकी हुँदा देवता र राक्षसहरूले उनलाई त्रिशूलगङ्गा भने। त्रिशूलबाट उत्पन्न भएकी शिवजीको जस्तो नीलो आकृतिले युक्त अमृतजस्तै स्वच्छ र स्फटिकजस्तो कान्ति भएकी ती गङ्गा त्यस शिखरमा तलाउ बन्न पुगिन् ।५८-६४॥

---

३७. लभेत् इति न.सं.पु.पाठः।
३८. लभेत् इति न.सं.पु.पाठः।
३९. चन्दानाहार्यम् इति न.सं.पु.पाठः।
४०. नीलाद्र्यधो नितम्बेऽसौ इति न.सं.पु.पाठः।
४१. चारोहितुम् इति न.सं.पु.पाठः।
४२. ततो भूत्वा त्रयो धारा चोत्पेतुर्धर्मपर्वतात् इति न.सं.पु.पाठः।
४३. त्रयो इति न.सं.पु.पाठः।
४४. उत्पपातैश्च इति न.सं.पु.पाठः।
४५. च तत्सानौ इति न.सं.पु.पाठः।

स्वच्छनीरेण सम्पूर्णं बहुकल्लोलिनं ह्रदम् । मुमोद प्रेक्ष्य शूली स चाऽगाधं देवखातकम् ॥६५॥
नीलकण्ठह्रदाच्चाधः पपात तज्जलं पुनः । तदधश्च ह्रदीभूतं कुण्डं सुवर्त्तुलं तथा ॥६८॥
स्फाटिकनीरनिस्सारादभूद् ह्रदस्तथाविधः[४६] । स्फाटिकाभामृतैः पूर्णः शीतलार्णसुनिर्मलः ॥६९॥
ह्रदमध्ये ततो रुद्रः प्रविश्य चातिहर्षितः । अशयिष्ट सुखं धीमन् बहुशीतजलोत्तमे ॥६६॥
दिव्यं वर्षशतं व्याप्य सुष्वाप च सुखं विभुः । आच्छाद्य स्वम्भसात्मानं सर्वसत्त्वफलप्रदे ॥६७॥
एकात्मानं द्विधा कृत्वा ततो व्याचष्ट शङ्करः । गणेशक्षेत्रपालौ तौ द्वारं रक्षयतं सदा[४७] ॥७०॥

नीलकण्ठ उवाच

गणेश क्षेत्रपालाऽऽशु पश्चिमायामितो[४८] दिशि । मद्द्वारं रक्षतन्नित्यं परिवारैः समं युवाम् ॥७१॥
तिष्ठतं रक्षयन्तौ च क्षेत्रं पापिनिवारकौ[४९] । तिष्ठतं सर्वजीवानां शासनाय च गच्छतम्[५०] ॥७२॥

स्कन्द उवाच

गणेशक्षेत्रपालौ तौ प्राप्तेप्सितौ[५१] सुरोत्तमौ । तस्य चाज्ञां समादाय जग्मतू रक्षितुं हि तत् ॥७३॥
त्रिशूलाद्रेरवाच्यां हि शृङ्गे[५२] द्वारोत्तमे शुभे । अतिष्ठतां[५३] गणैः सार्द्धं दण्डपाणिमहेश्वरौ ॥७४॥

---

स्वच्छ पानीले भरिएको, धेरै तरङ्गले युक्त आठवटा खाल्य भएको त्यो गहिरो तलाउलाई देखेर भगवान् शङ्कर खुसी हुनुभयो । हे अगस्त्य मुनि ! भगवान् शङ्कर अत्यन्त खुसी हुँदै तलाउमा प्रवेश गर्नुभयो र ज्यादै चीसो जलमा आनन्दसित सुत्नुभयो । सम्पूर्ण प्राणीहरूलाई पुण्यफल दिने त्यस तलाउमा भगवान् शङ्कर जलले आफूलाई ढाकेर दिव्य सय वर्षसम्म आनन्दसित सुत्नुभयो ॥६५-६७॥

नीलकण्ठ तलाउबाट तलतिर त्यो जल खस्यो, त्यसभन्दा मुनि बाटुला कुण्डहरू बने । फटिकबाट निस्किएको निर्मल, सुशीतल, फटिकजलले परिपूर्ण भएपछि त्यसमुनि त्यस्तै अर्को कुण्ड (सरस्वती कुण्ड) बनेको छ । एउटै आत्मालाई दुई भागमा पारेर गणेश र क्षेत्रपाललाई तिमीहरूले सधैँ ढोकाको रक्षा गर्नू भनेर शङ्करले भन्नुभयो ॥६८-७०॥

नीलकण्ठले भन्नुभयो - हे गणेश ! हे क्षेत्रपाल ! यसभन्दा पश्चिमपट्टि रहेको ढोकालाई परिवारका साथ बसेर तिमी दुईले सधैँ रक्षा गर्नू । यो क्षेत्रलाई रक्षा गर्दै तिमीहरू बस, पापीहरूलाई आउन नदेओ, सम्पूर्ण प्राणीहरूको शासनका लागि तिमीहरू जाओ ॥७१-७२॥

कार्तिक स्वामीले भन्नुभयो - सुरश्रेष्ठ गणेश र क्षेत्रपाल भगवान् शङ्करबाट उत्तम वर प्राप्त गरेर उहाँको अनुमति लिई त्यस ढोकाको रक्षाका निमित्त गए । त्रिशूल पर्वतको दक्षिण पाखाको थुम्कामा सुन्दर उत्तम द्वार छ, त्यहाँ आफ्ना गणहरूका साथ गणेश र दण्डपाणि क्षेत्रपाल गएर बसे ॥७३-७४॥

---

४६. स्फाटिकनिःसुतान्नीरादभूद् ह्रदं तथाविधः इति न.सं.पु.पाठः ।
४७. गणेशक्षेत्रपालाभ्यां द्वाररक्षय सन्ततम् इति न.सं.पु.पाठः ।
४८. आतश्च पश्चिमे इति न.सं.पु.पाठः ।
४९. तिष्ठताद्रक्षयन् क्षेत्रं पापात्मानं निषेधकौ इति न.सं.पु.पाठः ।
५०. तिष्ठन्तु सर्वलोकानां शासने गच्छथो युवाम् इति न.सं.पु.पाठः ।
५१. लब्धवरौ इति न.सं.पु.पाठः ।
५२. सानौ इति न.सं.पु.पाठः ।
५३. तिष्ठतः स्म इति न.सं.पु.पाठः ।

ब्रह्मादयोऽमराश्चान्ये तत्र गन्तुं विलङ्घ्य वै। असमर्था भवेयुस्ते किं पुनः क्षुद्रमानुषाः ॥७५॥
तदादि क्षेत्रपालौ तौ सर्वद्वारस्थितौ सदा। तदाज्ञां हि विना लोका गन्तुं शेकुर्न तत्र वै ॥७६॥

तौ दण्डिनौ देववरौ हि नित्यं तद्द्वारसंस्थौ ह्यवतः स्म देशम्।
प्रणम्य तौ यान्ति जनाः सुभक्त्या[५४] ब्रह्मादयो धीर न चाऽन्यथा हि ॥७७॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नीलकण्ठोत्पत्तिर्नाम पञ्चचत्वारिंशोऽध्यायः ॥४५॥

---

यी महादेवको शासनलाई उल्लङ्घन गरेर ब्रह्मा, विष्णु आदि देवता पनि नीलकण्ठ क्षेत्रमा प्रवेश गर्न सक्दैनन् क्षुद्र मानिसको त कुरै छाडौं। त्यसै समयदेखि ती दुई क्षेत्रपाल सबै ढोकामा बसेका छन्, तिनीहरूको आज्ञा विना मानिस त्यहाँ जान सक्दैन। हातमा दण्ड लिने ती दुबै गण र क्षेत्रपाल महादेवको द्वारपाल भएर तीर्थको रक्षा गरी बसेका छन्। भक्तिभावले तिनको पूजा, वन्दना गरेपछि मात्र ब्रह्मा आदि गरिएका देवताहरू पनि त्यहाँ जान पाउँछन्, नत्र पाउँदैनन् ॥७३-७७॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा नीलकण्ठको उत्पत्तिनामक पैंतालिसौं अध्याय पूर्ण भयो।

---

५४. तौ वन्द्य गच्छन्ति हि तत्र भक्त्या इति न.सं.पु.पाठः।

# षट्चत्वारिंशोऽध्यायः

## नीलकण्ठमहिमा देवताभ्यो वरप्रदानञ्च

### स्कन्द उवाच

कालान्ते भैरवो देवः स्नातुं तत्र समागमत्। तस्य मूर्तिर्द्वितीयाऽसौ विलङ्घ्य पर्वतांस्तथा ॥१॥
छेदनाद् ब्रह्मणः शीर्षं प्रलिप्ताङ्गस्तदेनसा। विरूपोऽभवदीशोऽसौ कुष्ठवाँस्तत्र चाऽऽगमत् ॥२॥
अशयिष्ट स्वयं तत्र भैरवो भीष्मविग्रहः। सुखं कुष्ठाङ्किताऽङ्गोऽसौ भिन्नाञ्जनचयोपमः ॥३॥
तस्माच्च तज्जलं तत्र महानीलरसोपमम्। भीषणाभं[1] सुकल्लोलं सर्वजीवभयप्रदम् ॥४॥
दुर्वासःशापितो विष्णुस्तच्छापाद् भयविह्वलः। अपराधैर्यदूनाञ्च सुरापानादिभिः पुरा[2] ॥५॥
तच्छापस्य प्रशान्त्यै च[3] विष्णुस्तत्र समागमत्। नीलकण्ठह्रदे स्नातुमुत्तीर्णः पर्वतान् बहुन् ॥६॥
नीलकण्ठह्रदे विष्णुः स्नात्वा भैरवकुण्डतः। अधो ह्रदान् मुदायुक्तो ह्यशयिष्ट[4] सुखं पुनः ॥७॥
सरस्वत्या समं विष्णुस्तत्र तिष्ठति नित्यशः। विष्णुकुण्डमिति ख्यातं[5] विष्णोः सुशयनान्मुने ॥८॥
ब्रह्माऽपि चाऽऽगमत्तत्र देवीशापातिविह्वलः। तच्छापशमनार्थञ्च विलङ्घ्याऽद्रीन् शनैः शनैः ॥९॥
नीलकण्ठह्रदे सस्नौ देवीशापाङ्कितस्तनुः। सम्पूज्य विधिवत्कुण्डमुमामहेश्वराह्वयम् ॥१०॥
स्नात्वा तत्र विधिर्विष्णोः कुण्डस्याऽधः स्थितः पुनः। अशयिष्ट मुदा कुण्डे तदेकांशः सुखं मुने ॥११॥
ब्रह्मणः शयनाल्लोके तत्कुण्डं सुमहोज्ज्वलम्। ब्रह्मकुण्डमिति ख्यातं सर्वतीर्थमयं शुभम् ॥१२॥
दिव्यवर्षसहस्राणि तेषु कुण्डेषु सन्ततम्। अशयिषन्त ते देवा रुद्रविष्णुपितामहाः ॥१३॥

---

## अध्याय – ४६

### भगवान् नीलकण्ठको महिमा र देवताहरूलाई वरप्रदान

कार्तिक स्वामीले भन्नुभयो – कालान्तरमा महादेवका दोस्रो मूर्ति भीमसेन धेरै पर्वतहरू नाघेर नीलकण्ठदहमा स्नान गर्न आए। ब्रह्माजीको शिर काटेको पापले ग्रस्त रूपहीन र कुष्ठरोग लागेका महेश्वर नीलकण्ठपर्वतमा आउनुभयो। डरलाग्दो शरीर भएका, कालो गाजलको थुप्रोजस्तो देखिने र कुष्ठरोगले ग्रस्त हुनुभएका भैरवरूप शिव त्यहाँ आनन्दसित सुत्नुभएको थियो। त्यसैले त्यो जल अत्यन्त नीलो रसजस्तो, डरलाग्दो र सम्पूर्ण प्राणीलाई त्रास पैदा गर्ने तरङ्गले युक्त भएको छ ॥१–४॥

हे अगस्त्य मुनि ! दुर्वासाका सरापले भयभीत भएका र यादवहरूले गरेको मद्यपानको अपराधले गर्दा भगवान् विष्णु व्याकुल हुनुभएको थियो। त्यसैले उहाँ पनि त्यो सराप र पापको शान्तिका लागि नीलकण्ठदहमा स्नान गर्न अनेक दुर्गम पर्वतहरू नाघेर आउनुभएको थियो। नीलकण्ठदहमा स्नान गरेर भैरवकुण्डभन्दा तलतिर रहेको सरस्वती कुण्डमा भगवान् विष्णु आनन्दसाथ सुत्नुभयो ॥५–७॥

हे अगस्त्य मुनि ! सरस्वतीका साथमा विष्णु सधैँ त्यहाँ बस्नुहुन्छ। विष्णु सुत्नुभएको हुनाले सरस्वतीकुण्ड विष्णुकुण्डका नामले प्रसिद्ध छ। देवीको सरापले अत्यन्त विह्वल भएर त्यो सरापलाई हटाउन बिस्तारै बिस्तारै पर्वतहरू नाघ्दै ब्रह्माजी पनि त्यहाँ आउनुभएको थियो। देवीको सरापले ग्रस्त शरीर भएका ब्रह्माजीले विधिपूर्वक उमा र महेश्वरको कुण्डहरूको पूजा गर्नुभयो र नीलकण्ठदहमा स्नान गर्नुभयो। नीलकण्ठदहमा स्नान गरेपछि विष्णुकुण्डभन्दा तल रहेको अर्को कुण्डमा ब्रह्मा आनन्दसँग सुत्नुभयो ॥८–११॥

ब्रह्मा सुत्नुभएको हुनाले अत्यन्त उज्यालो देखिएको सम्पूर्ण तीर्थले युक्त त्यो कुण्ड ब्रह्मकुण्डका नामले प्रसिद्ध भएको छ। त्यस कुण्डमा दिव्य एक हजार वर्षसम्म शिव, विष्णु र ब्रह्मा निरन्तर सुत्नुभएको थियो ॥१२–१३॥

---

१. भीषणाम्भः इति न.सं.पु.पाठः।
२. सुरापानं पुरा मुने इति न.सं.पु.पाठः।
३. प्रशान्ताय इति न.सं.पु.पाठः।
४. मुदायुक्त अशयिष्ट इति न.सं.पु.पाठः।
५. विष्णुकुण्ड इति ख्यातो इति न.सं.पु.पाठः।

दिव्यवर्षावसाने ते स्वं स्वं स्थानं ययुः पुनः। विनिर्गत्य समाधाय स्वांशं स्वांशञ्च तेषु तेषु ते ॥१४॥
पूर्वं देवा ययुस्तत्र ब्रह्मविष्णुपुरोगमाः। ज्ञानेश्वरः स्थितः कुण्डे धर्मधारापरिप्लुते ॥१५॥
मरीचिश्चैवमत्रिश्च पुलस्त्यः पुलहः ऋतुः। भृगुस्तथाऽङ्गिरा भूयो वशिष्ठो नारदो मुनिः ॥१६॥
सनच्च सनकश्चैव सनातनः सनन्दनः। तथा सनत्कुमारश्च ब्रह्मा च कपिलस्तथा ॥१७॥
कश्यपश्च मनुश्चैव धौम्यो दक्षस्तथापरः। दुर्वासाश्च मुनिश्रेष्ठो मार्कण्डेयस्तथा पुनः ॥१८॥
शक्तिः पराशरो वत्सो द्वितयस्त्रितयस्तथा। गालवश्च्यवनश्चैव भारद्वाजो महामुनिः ॥१९॥
एते मुनिवराः सर्वे नीलकण्ठह्रदोत्तमे। मुदा समाययुः स्नातुं पूजोपहारपाणयः ॥२०॥
स्नात्वा स्नात्वा च तीर्थेषु वेत्रगङ्गादिषु द्रुतम्। नीलकण्ठं विलङ्घ्याऽद्रिं नीलकण्ठजपे रताः[६] ॥२१॥
गन्धर्वाः किन्नराः सिद्धा नागाः सुराप्सरोगणाः। यक्षरक्षःपिशाचाश्च ते तत्र स्नातुमाययुः ॥२२॥
प्रमथाश्चैव योगिन्यश्चतुःषष्टिः सकोटयः। नीलकण्ठह्रदे कुण्डे स्नातुं तत्र समाययुः ॥२३॥
ते पूर्वं दण्डवन्नेमुः सम्प्रेक्ष्य दूरतो ह्रदम्। भक्त्या प्रणेमुरष्टाङ्गैः स्मरन्तो नम ओमिति[६क] ॥२४॥
सस्नुस्ते भक्तिभिस्तत्र निमज्योन्मज्य सादरम्[७]। उमामहेश्वरं तीर्थं स्मरन्तश्च यथाविधि[८] ॥२५॥
तर्पणानि तदा चक्रुर्देवर्षयो यथापरे[९]। रुद्रं पूर्वं मुदा[१०] सर्वे प्रणेमुर्भक्तिभिर्मिथः ॥२६॥
कुण्डे चाऽऽवाह्य ते रुद्रं ह्यपूपुजन् समर्हणैः। पञ्चोपचारकैर्दिव्यैर्भक्तिपूर्वं यथाविधि ॥२७॥
नेमुश्च दण्डवद् भूमौ चाऽष्टाङ्गस्पृष्टभूतलाः[१०क]। स्वशिरःस्वञ्जलिं बद्ध्वा तुष्टुवुस्त्रिविधैः पुनः ॥२८॥

---

दिव्य एक हजार वर्षको अन्त्यमा ती देवताहरू आफ्नो आफ्नो स्थानमा फेरि जानुभयो। ती कुण्डबाट निस्कदा आफ्नो आफ्नो अंशलाई त्यसै कुण्डमा छोड्नुभयो। पहिले ब्रह्मा, विष्णु आदि गरिएका देवताहरू त्यहाँ आए। धर्मधारा कुण्डमा ज्ञानेश्वर भगवान् बस्नुभयो ॥१४-१५॥

त्यसपछि मरीचि, अत्रि, पुलस्त्य, पुलह, ऋतु, भृगु, अङ्गिरा, वसिष्ठ र नारद त्यहाँ गए। सनक, सनातन, सनन्दन, सनत्कुमार, ब्रह्मा, कपिल, कश्यप, मनु, धौम्य, दक्ष, दुर्वासा, श्रेष्ठमुनि मार्कण्डेय, शक्ति, पराशर, वत्स, द्वितीय, त्रितय, गालव, च्यवन र भारद्वाज नाम गरेका मुनिहरू हातमा पूजासामग्री लिएर स्नान गर्नका लागि नीलकण्ठ दहमा आए ॥१६-२०॥

वेत्रगङ्गा आदि तीर्थमा स्नान गरेर पर्वतहरूलाई नाघ्दै पाइलैपिच्छे नीलकण्ठ-नीलकण्ठ भन्दै हिँडे। गन्धर्व, किन्नर, सिद्ध, नाग, देवता, अप्सरा, यक्ष, राक्षस र पिशाचहरू पनि गोसाईंकुण्डमा स्नान गर्न आए। प्रमथ गण र चौसठ्ठी करोड योगिनी गणहरू पनि नीलकण्ठ दह भएको कुण्डमा स्नान गर्न त्यहाँ आए ॥२१-२३॥

ती सबैले टाढैबाट दहलाई देखेर हृदयले ॐ नमः सम्झदै भक्तिपूर्वक त्यस दहलाई साष्टाङ्ग दण्डवत् गरे। यो उमामहेश्वरको तीर्थ हो भन्ने बुद्धिले सम्झिएर तिनीहरूले त्यस कुण्डमा डुब्दै उत्रदै गरेर भक्तिपूर्वक स्नान गरे। देवता, ऋषिहरू र अरूले पनि तर्पण दिए। भक्तिपूर्वक परस्पर मिलेर सबैले भगवान् शङ्करलाई प्रणाम गरे ॥२४-२६॥

उनीहरूले कुण्डमा भगवान् शङ्करलाई आवाहन गरे। पूजासामग्री लिएर पञ्चोपचारद्वारा भक्तिपूर्वक विधिअनुसार उनीहरूले भगवान्को पूजा गरे। उनीहरूले लम्पसार परेर आठै अङ्गले भूमिस्पर्श गरी दण्डवत् प्रणाम गरे र अँजुली बाँधी शिरमा लगेर तीनै किसिमको भक्तिद्वारा स्तुति पनि गरे ॥२७-२८॥

---

६. नीलकण्ठं विलङ्घ्याद्रीन्निति वदन् पदे पदे, इति न.सं.पु.पाठः। ६क. अष्टाङ्गैर्भक्तिसंयुक्ता इत्यों नमो हृदा स्मरन्, इति न.सं.पु.पाठः।
७. साम्प्रतम्। इति न.सं.पु.पाठः। ८. स्मरन्धीभिर्यथाविधि, इति न.सं.पु.पाठः। ९. यथापराः, इति न.सं.पु.पाठः।
१०. मिथः, इति न.सं.पु.पाठः। १०क. चाष्टाङ्गस्पर्शनाचलाः, इति न.संसपु.पाठः।

देवा ऊचुः

ॐ नमः प्रणवाख्याय नमस्ते जलमूर्तये[११]। ॐ शिवाय शिवायै च शिपिविष्टाय वै नमः ॥२९॥
ॐ नमो नीलकण्ठाय निरञ्जनाय शूलिने। नीललोहितदेहाय[१२] निर्विकाराय ते[१३] नमः ॥३०॥
नारायण्यै च नन्दाय नारामूर्त्यै नमो नमः। आनन्दसहजायै च जगदानन्ददायिनि ॥३१॥
आर्यापादसमुद्भूतस्वेदधाराप्रशायिने। रक्षणाय च लोकानां क्ष्वेडाशनाय वै नमः ॥३२॥
परब्रह्मस्वरूपायै परायै च परात्मने। परापरप्रतीतायै परमेश्वर्यै नमो नमः ॥३३॥
व्यक्ताय व्यक्तरूपिण्यै व्यक्ताव्यक्तस्वरूपिणे। व्यक्तानामप्यलक्ष्यायै व्यक्तरूपाय वै नमः ॥३४॥
जीवनांशाय जीवाय जीवनाख्याय वै नमः। जीविन्यै[१४] जीवजीविन्यै जीवनायै नमो नमः ॥३५॥
नीलकण्ठाय रुद्राय जलदेवाय ते नमः। जलदेव्यै महादेव्यै धर्मधारे नमोऽस्तु ते ॥३६॥
नीलालङ्कृतग्रीवाय[१५] महादेवाय ते नमः। शुद्धस्फटिकसङ्काशे धर्मधारे नमोऽस्तु ते ॥३७॥
भूतानामपि भूताय भूतपाय नमो नमः। भूतानां भूतिदायिन्यै भूतिमूर्त्यै नमो नमः ॥३८॥
सर्वेश्वराय भीमाय सर्वार्त्तिहारिणे नमः। सर्वेश्वर्य्यै महेश्वर्यै द्रवीभूते नमोऽस्तु ते ॥३९॥
क्ष्वेडाशनेन संसाररक्षकाय नमो नमः। क्ष्वेडोन्मत्तमहादेवरक्षिकायै नमो नमः ॥४०॥

स्कन्द उवाच

इत्याकर्ण्य स्तवं दिव्यं सर्वं देवमुखाच्च्युतम्। आविर्भूतो हि तत्कुण्डे नीलकण्ठो वृषध्वजः ॥४१॥
हेमाम्भोरुहसङ्काशो बहुवक्त्रेक्षणो विभुः। सर्वायुधधरो देवोऽभयवरप्रदः प्रभुः ॥४२॥

---

देवताहरूले भने – प्रणवलाई नमस्कार छ, जलमूर्तिलाई बारम्बार नमस्कार छ। ॐकारस्वरूप शिव, पार्वती र शिपिविष्टलाई नमस्कार छ। त्रिशूल हातमा लिने, नीलो र रातो शरीर भएका विकारहीन निरञ्जन नीलकण्ठलाई नमस्कार छ। जलको रूप लिने आनन्ददायी नारायणीलाई नमस्कार छ। सहज किसिमले संसारलाई आनन्द दिने भगवतीलाई नमस्कार छ। भगवतीको पाउबाट उत्पन्न भएको निर्मल जलमा सुत्ने र संसारको रक्षाका लागि विष पान गर्ने महादेवलाई नमस्कार छ। परब्रह्मस्वरूप भएकी परमात्मा पर र अपरका रूपमा चिनिने परमेश्वरीलाई बारम्बार नमस्कार छ। व्यक्त रूप लिने नीलकण्ठलाई नमस्कार गर्दछु। यसैगरी व्यक्त र अव्यक्त स्वरूप भएका नीलकण्ठलाई नमस्कार गर्छु। व्यक्त भएका देवताहरूको पनि दृष्टिमा नआउनुहुने देवीलाई नमस्कार गर्छु। नीलकण्ठका रूपमा व्यक्त हुनुहुने शिवलाई नमस्कार गर्छु। प्रत्येक जीवनका अंश भएर रहनुहुने, प्रत्येक जीवनका रूपमा रहनुहुने, वस्तुतः स्वयं नै समग्र जीवनका रूपमा परिणत हुनुहुने भगवान् नीलकण्ठलाई नमस्कार छ। यसैगरी जीवहरूलाई जीवन प्रदान गर्नुहुने र स्वयं जीवका रूपमा रहनुहुने भगवतीलाई बारम्बार नमस्कार गर्छौं ॥२९-३५॥

जलका देवता हे नीलकण्ठ ! हे रुद्र ! हजुरलाई नमस्कार छ। जलकी महादेवी हे धर्मधारा ! हजुरलाई नमस्कार छ। विषले गर्दा सुशोभित कण्ठ भएका महादेवलाई नमस्कार छ। शुद्ध फटिकको जस्तो कान्ति भएकी हे धर्मधारा ! हजुरलाई नमस्कार छ। भूतका पनि भूत भएका भूतपतिलाई बारम्बार नमस्कार छ। प्राणीलाई कल्याण दिने विभूतिकी मूर्तिलाई बारम्बार नमस्कार छ। सम्पूर्ण प्राणीको पीडालाई हरण गर्ने डरलाग्दो स्वरूप भएका सबैका ईश्वरलाई नमस्कार छ। सम्पूर्ण ऐश्वर्यकी स्वामिनी तरल रूप लिने हे भगवती ! हजुरलाई नमस्कार छ। विषमाथि बसेर संसारको रक्षा गर्ने भगवान्लाई बारम्बार नमस्कार छ। विषले उन्मत्त भएका महादेवलाई रक्षा गर्ने देवीलाई बारम्बार नमस्कार छ ॥३६-४०॥

स्कन्द भन्नुहुन्छ – देवताहरूको मुखबाट निस्केको दिव्य यो स्तुति सुनेर त्यसै कुण्डबाट नीलकण्ठ भगवान् शङ्कर प्रकट हुनुभयो। भगवान् शङ्कर सुनको कमलजस्तो उज्यालो हुनुहुन्थ्यो। उहाँका धेरै मुख र आँखा थिए। व्यापक हुनुहुन्थ्यो। उहाँले सम्पूर्ण शस्त्रहरू लिनुभएको थियो र सबैलाई अभय वर दिइरहनुभएको थियो ॥४१-४२॥

---

११. जलमूर्त्यै नमो नमः इति न.सं.पु.पाठः। १२. नीललोहितदेहायै इति न.सं.पु.पाठः। १३. वै इति न.सं.पु.पाठः।
१४. जीविनी इति न.सं.पु.पाठः। १५. नीलेन भूषितग्रीव इति न.सं.पु.पाठः।

व्याघ्रचर्मपरीताङ्गो मुण्डमालागलावृतः। स्मितास्यो नीलकण्ठश्च शङ्करश्चन्द्रशेखरः ॥४३॥
ज्योतिरूपो महादेवः सर्वाभरणभूषितः। नागयज्ञोपवीतोऽसौ दिव्यमूर्तिधरो विभुः ॥४४॥
देवीं दधार वामोरौ सर्वाभरणभूषिताम्। नीलोत्पलाक्षमालाञ्च विभ्रतीञ्च वराभये ॥४५॥
स्मिताननां महादेवीं प्रकृतिञ्च परात्पराम्। अयुतार्कप्रभां तां वै दोष्णा परिष्वजन् मुदा ॥४६॥
जगदानन्दरूपोऽसौ व्याचष्ट वचनं तदा। भासयञ्च दिशः सर्वा दन्तभाभिः स्मिताननः ॥४७॥

नीलकण्ठ उवाच

स्तवेन तोषितोऽहञ्च त्रिविधाभिश्च भक्तिभिः। दास्यामि वो वरान् देवाः शृणुध्वं तद्दिवौकसः ॥४८॥
यद्यद्वाञ्छथ यूयं नो प्राप्नुत[१६] तत्तदाशु च। यतो स्नाताश्च[१७] मत्कुण्डे धर्मधारापरिप्लुते ॥४९॥
शिवशक्त्यात्मके कुण्डे देवर्षीणां[१८] निमज्जनैः। आर्यया सह तुष्टोऽहं जीव्यासुः सुचिरं सुराः ॥५०॥
शत्रुभिर्नाभिभूयन्तां प्रमुच्यन्ताञ्च किल्विषैः। स्थिरा भवन्तु वो भक्ताः स्वे स्वे स्थाने हि मद्वरात् ॥५१॥
कुर्वन्ति ये नराः[१९] स्नानं विहीना अपि भक्तिभिः। करिष्यन्ति च मत्कुण्डे तेभ्यो दास्याम्यहं वरान् ॥५२॥
सर्वपापैर्विनिर्मुक्ताः सर्वजन्मार्जितैरपि। ते मत्काये प्रलीयन्तां महापातकिनोऽपि वा ॥५३॥
स्नातका यं यमिच्छन्ति तं तं कामं च प्राप्नुयुः[२०]। स्त्रियः पुरुषतां यान्तु पुमांसोऽपि च देवताम् ॥५४॥
जलस्पर्शनमात्रेण मत्कुण्डस्य चराचराः। विमुक्ताः सर्वपापैस्ते विमुखा गर्भवेश्मसु ॥५५॥
वृक्षा लताश्च गुल्मानि[२१] तृणानि च शिलास्तथा। तत्तद्देहैर्विमुच्यन्तां मज्जलस्पर्शनाद् ध्रुवम् ॥५६॥
पशुपक्षिपतङ्गाश्च कृमिकीटाङ्गजास्तथा। मत्कुण्डस्य जलस्पर्शान्मुच्यन्तां तत्कलेवरात् ॥५७॥

---

भगवान् नीलकण्ठले शरीरमा बाघको छाला लगाउनुभएको थियो, घाँटीमा मुण्डमाला पहिरनुभएको थियो र शिरमा चन्द्रमा लगाउनुभएको थियो। उहाँको अनुहार हँसिलो थियो। उहाँ ज्योतिरूप महादेव हुनुहुन्थ्यो। सम्पूर्ण गहनाले सुशोभित दिव्य मूर्तिलाई धारण गर्ने भगवान् शिवले नागको जनै लगाउनुभएको थियो। सम्पूर्ण गहना लगाएकी, नीलकमल र अक्षमाला धारण गरेकी, वर र अभय मुद्रा लिएकी पार्वतीलाई उहाँले बायाँ काखमा राख्नुभएको थियो। मुसुक्क हाँस्ने, परमप्रकृतिस्वरूप, दश हजार सूर्यको जस्तो कान्ति भएकी पार्वतीलाई भगवान्ले आनन्दसित अङ्कमाल गर्नुभएको थियो। दाँतको कान्तिले सम्पूर्ण दिशालाई उज्यालो बनाउँदै हँसिलो अनुहार भएका जगत्का आनन्दस्वरूप भगवान्ले त्यसबखत देवताहरूलाई भन्नलाग्नुभयो ॥४३-४७॥

नीलकण्ठले भन्नुभयो – हे देवता हो ! तीनै किसिमका भक्तियुक्त स्तुतिद्वारा म खुसी भएँ। म तिमीहरूलाई वर दिन्छु, सुन। धर्मधाराले युक्त भएको मेरो कुण्डमा स्नान गर्ने तिमीहरूलाई जे-जे इच्छा लागेको छ, त्यो त्यो मबाट तुरुन्त प्राप्त हुनेछ। अर्थात् तिमीहरूको चाहना म पूर्ण गरिदिन्छु। हे देवता हो ! शिवशक्तिले युक्त भएको यस कुण्डमा तिमीहरूले स्नान गरेको हुँदा पार्वती र म खुसी भएका छौं। धेरै समयसम्म बाँच। शत्रुले तिमीहरूलाई हेप्न नसकून्, पापहरूले तिमीहरूलाई स्पर्श गर्न नसकून्। हे भक्त हो ! मेरो वरले गर्दा स्थिर भएर तिमीहरू आ-आफ्नो ठाउँमा बस। भक्तिविना पनि जुन प्राणीहरूले मेरो यस कुण्डमा स्नान गर्छन् र भविष्यमा पनि गर्लान् तिनीहरूलाई म वर दिन्छु ॥४८-५२॥

सम्पूर्ण जन्ममा गरेका सम्पूर्ण पापबाट महापापी नै भए पनि ती व्यक्तिहरू मेरो शरीरमा लीन हुनेछन्। स्नान गर्ने मानिसहरूले जे-जे कामना गरेका हुन्छन्, ती सबै पाऊन्। स्त्रीहरू पुरुष बनून् र पुरुषहरू देवता बनून्। मेरो कुण्डको जलको स्पर्शले मात्र पनि चर एवं अचर तत्त्वहरू सम्पूर्ण पापबाट मुक्त भएर गर्भवासको झन्झटबाट पार पाउँछन्। रुख, लहरा, गुल्म, घाँस तथा शिलाहरूले मेरो जलको स्पर्श गरे भने तिनीहरूले ती ती शरीरबाट पनि मुक्ति पाउँछन्। मेरो कुण्डको जल स्पर्श गर्ने पशु, पक्षी, कीरा, फट्याङ्ग्रा पनि आ-आफ्ना शरीरबाट मुक्त हुनेछन् ॥४८-५७॥

---

१६. प्राप्यताम् इति न.सं.पु.पाठः। १७. स्नातेभ्यैश्च इति न.सं.पु.पाठः। १८. युष्माकम् इति न.सं.पु.पाठः।
१९. ये जीविनोऽत्र च इति न.सं.पु.पाठः। २०. लभन्तु ते इति न.सं.पु.पाठः। २१. गुल्माश्च, न.सं.पु.पाठः।

उत्पत्स्यन्ते नरा भूत्वा[२२] भोक्तारस्ते यथेप्सितान्। ज्ञानात्ततो भविष्यन्ति द्विजोत्तमास्तपस्विनः ॥५८॥
ततो मयि च ते सर्वे मद्भक्ता मां परायणाः। एकरूपा[२३] भविष्यन्ति योन्युद्भवविवर्जिताः ॥५९॥
स्वं स्वं गच्छत स्थानञ्च भक्ता यथागतास्तथा। पूर्णमनोरथा यूयं भवत जयिनो भृशम्[२४] ॥६०॥

स्कन्द उवाच

इत्युक्त्वा च तिरोधानं देवेभ्यस्तद्ध्रदे विभुः। ह्रदमध्ये ययौ रुद्रः सर्वदेवान् प्रदर्शयन् ॥६१॥
नीलकण्ठं पुनः स्नात्वा परिक्रम्य पुनः पुनः। स्वं स्वं स्थानं ययुर्लब्धवरा देवा महेश्वरात् ॥६२॥
भैरवाख्ये महाकुण्डे स्नानं कुर्वन्ति ये जनाः। पापपुञ्जं निराकृत्य[२५] गच्छन्ति रुद्रसद्मनि ॥६३॥
विष्णुकुण्डे च ये स्नानं कुर्वन्ति भक्तिपूर्वकम्। महापापानि सन्त्यज्य गच्छन्ति विष्णुसद्मनि ॥६४॥
स्नानं कुर्वन्ति ये केचिद् ब्रह्मकुण्डेऽजसेविते। विधूय सर्वपापानि गच्छन्ति ब्रह्मणः पुरम् ॥६५॥
सर्वोपरि महाकुण्डे गौरीघर्मोद्भवामृते। ब्रह्मकुण्डे पवित्रे च स्नातकानां फलं शृणु ॥६६॥
सर्वजन्मार्जितैः पापैः स मुक्तो नात्र संशयः। भूत्वा योगीश्वरोऽन्ते स उमालोकं प्रगच्छति ॥६७॥
शताश्वमेधयज्ञानां लब्ध्वा फलानि चाऽऽप्लवात्। इह लोकं परित्यज्य सदेहो गच्छति परम् ॥६८॥
अयुतार्कभयानस्थो जनैर्दिव्यैः[२६] प्रसेवितः। कोटिकुलं समुद्धृत्य गौरीलोकं स गच्छति ॥६९॥
ब्रह्मकुण्डानि यो धीरस्तत्रागत्य प्रपश्यति। तद्यानस्थो हि निष्पापः साङ्गः शैवं प्रगच्छति ॥७०॥

एतद्धि तुभ्यं कथितं मया वै कुण्डस्य माहात्म्यमतिप्रपूतम्।
नीलाभतीक्ष्णाशनकालकूटप्रोद्योतकण्ठातिविभूषितस्य ॥७१॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नीलकण्ठमाहात्म्ये देवलोकवरप्रदानं नाम
षट्चत्वारिंशोऽध्यायः ॥४६॥

---

तिनीहरू मानिस भएर जन्मिई इच्छाअनुसारको भोग गर्न पाउनेछन्। उनीहरू ज्ञानी, उत्तम ब्राह्मण र तपस्वी हुनेछन्। त्यसपछि ती सबै मेरा भक्त विभिन्न योनिमा जन्मनुपर्ने बाध्यताबाट मुक्त भएर ममा नै मन दिई ममा नै लीन हुनेछन्। हे भक्त हो ! तिमीहरू जताबाट आयौ, त्यतैतिर आ–आफ्नो स्थानमा जाओ। मनोरथपूर्ण गरेर चारैतिरबाट तिमीहरूले विजय प्राप्त गर्नू ॥५८–६०॥

कार्तिक स्वामीले भन्नुभयो – देवतालाई यति भनेर भगवान् शङ्कर सबै देवताहरूका सामुन्ने तलाउको माथिबाट हिँड्नुभयो र त्यसै तलाउमा अन्तर्धान हुनुभयो। त्यसपछि शिवजीबाट वर प्राप्त गरेका देवताहरू नीलकण्ठ दहलाई बारम्बार परिक्रमा गरेर त्यहाँ स्नान गरी आ–आफ्नो स्थानमा गए। जुन मानिसले भैरवकुण्डमा स्नान गर्छन्, ती मानिसहरू सम्पूर्ण पापबाट मुक्त भएर भगवान् शङ्करको लोकमा जान्छन्। विष्णुकुण्डमा जुन मानिसले भक्तिपूर्वक स्नान गर्छन्, तिनीहरू सम्पूर्ण पापबाट मुक्त भएर विष्णुलोकमा जान्छन्। जुन मानिसहरू ब्रह्माजीद्वारा सेवित ब्रह्मकुण्डमा स्नान गर्छन्, तिनीहरू सम्पूर्ण पापबाट पखालेर ब्रह्मलोकमा जान्छन्। पार्वतीको पसिनाबाट उत्पन्न भएको अमृतस्वरूप सबैभन्दा माथि रहेको पवित्र महाकुण्ड र ब्रह्मकुण्डहमा स्नान गर्दा के फल प्राप्त हुन्छ, त्यो सुन्नुहोस्। त्यहाँ स्नान गर्ने मानिस सम्पूर्ण जन्ममा गरेका पापबाट मुक्त हुन्छ, त्यसमा सन्देह छैन। अन्त्यमा योगीश्वर भएर उमाको लोकमा जान्छ। त्यहाँ स्नान गर्ने व्यक्तिले सयवटा अश्वमेध यज्ञ गरेको फल पाउँछ र अन्त्यमा परमधाममा जान्छ। करोडौँ कुलको उद्धार गरी दश हजार सूर्यको जस्तो कान्ति भएको यानमा चढेर दिव्यजनद्वारा सेवित हुँदै त्यो गौरीलोकमा जान्छ। जुन बुद्धिमान् मानिस त्यहाँ गएर ब्रह्मकुण्डहरूको दर्शन गर्छ, त्यो व्यक्ति शिवजीको यानमा चढेर पापबाट मुक्त भई शरीरैसहित शिवलोकमा जान्छ। यसरी मैले तपाईंलाई अत्यन्त पवित्र तथा नीलो कान्ति भएको, डरलाग्दो कालकूट विषलाई खाएर सुशोभित हुनुभएका भगवान् शङ्करको कुण्डको माहात्म्य बताएँ ॥६१–७१॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डको नीलकण्ठको महिमा र देवताहरूलाई नीलकण्ठद्वारा वरप्रदान नामक छयालिसौं अध्याय पूर्ण भयो।

---

२२. जनिष्यन्ति नरो इति न.सं.पु.पाठः। २३. मयि लीनो इति न.सं.पु.पाठः। २४. जयमाप्नुयुः इति न.सं.पु.पाठः।
२५. सर्वपापान् विनिर्मोच्य इति न.सं.पु.पाठः। २६. दिव्यजनैः इति न.सं.पु.पाठः।

# सप्तचत्वारिंशत्तमोऽध्यायः

## नीलकण्ठयात्राविधिः

### अगस्त्य उवाच

भगवन् सर्ववित् स्कन्द त्वत्प्रसादान्मया श्रुतम्। नीलकण्ठोद्भवं पुण्यं[1] माहात्म्यं तस्य चाऽद्भुतम् ॥१॥
देवानां स्नातकानाञ्च तत्कुण्डेषु महाफलम्। तीर्थानाञ्च त्रयाणाञ्च माहात्म्यञ्च श्रुतं विभो ॥२॥
वाञ्छाम्यहं पुनः श्रोतुं नराणां तत्र शक्तिधृक्!। स्नातकानां फलान्याऽऽशु ज्ञानाज्ञानात्मनां तथा ॥३॥
क्रमञ्च श्रोतुमिच्छामि चाऽनुष्ठेयञ्च मानुषैः। कस्मिन् कस्मिँश्च तीर्थे प्राक् स्नातव्यञ्च कथं विधिः ॥४॥

### स्कन्द उवाच

अहो भाग्यवतां श्रेष्ठ मोक्षद्वारमनुत्तमम्। ज्ञानाज्ञानवतां नृणां यत्त्वं मां परिपृच्छसि ॥५॥
एकचित्तं समाधाय मुने शृणु मयि ध्रुवम्। अनुष्ठेयक्रमं वच्मि स्नातुः पुण्यफलानि च[2] ॥६॥
जिह्वाग्रे विद्यते यस्य नीलकण्ठःइति द्विज। अपवित्रः पवित्रो वा स गच्छति परं सदा ॥७॥
यो गच्छति गृहाद्बाह्यं समाधायैकमानसः। नीलकण्ठे ह्रदे स्नातुं गच्छामीति धिया ब्रुवन् ॥८॥
पदे पदेऽश्वमेधानां फलं लब्ध्वा नरो मुदा। योऽपि पथि मृतो स्नानाच्छिवलोकं स गच्छति ॥९॥
स्नातकः सर्वतीर्थेषु नीलकण्ठह्रदे ततः। सर्वशैलान् समुल्लङ्घ्य स्नानं करोति यः सुधीः ॥१०॥
भस्मस्नायी शिवध्यायी रुद्राक्षाक्ततनुर्मुदा। शिवमन्त्रं जपेल्लक्षं नीलकण्ठतटेऽनिशम् ॥११॥
सर्वयज्ञोद्भवं पुण्यं सर्वतीर्थोद्भवं फलम्। सर्वदानोद्भवं पुण्यं सर्वधर्मोद्भवं फलम् ॥१२॥
सकृद्धि स्नातकस्तत्र तत्पुण्यं कोटिकोटिशः। लब्ध्वा प्राप्नोति धीरोऽसौ प्रतिष्ठति शिवालयम् ॥१३॥

---

## अध्याय – ४७

### नीलकण्ठ (गोसाईंकुण्ड) को यात्रा गर्ने विधि

अगस्त्य मुनिले भन्नुभयो – हे भगवन् ! हे सर्वज्ञ कार्तिक स्वामी ! हजुरको कृपाबाट मैले नीलकण्ठ तलाउको उत्पत्ति र त्यसको अद्भुत माहात्म्य सुने। त्यस कुण्डमा स्नान गर्ने देवता र त्यसको फल पनि मैले सुनें। हे विभो ! तीनै तीर्थहरूको माहात्म्य पनि सुनें। हे कार्तिक स्वामी ! अब म जानी नजानी त्यहाँ स्नान गर्ने मानिसहरूले पाउने फलको बारेमा फेरि सुन्न चाहन्छु। मानिसहरूले अनुष्ठान गर्ने अर्थात् त्यहाँ स्नान गर्ने विधि पनि सुन्न चाहन्छु। कुन कुन तीर्थमा पहिले स्नान गर्नुपर्छ, त्यो विधि कस्तो छ ? बताइदिनुहोस् ॥१-४॥

कार्तिक स्वामीले भन्नुभयो– हे भाग्यमानीमा श्रेष्ठ भएका अगस्त्य मुनि ! जुन विषयमा तपाईं मलाई सोध्दै हुनुहुन्छ, त्यो कुण्ड जानी नजानीकन पनि स्नान गर्ने व्यक्तिहरूलाई मोक्ष दिने उत्तम ढोका हो। हे अगस्त्य मुनि ! त्यहाँ स्नान गर्ने क्रम तथा स्नानको फल म बताउँछु, एकचित्त भएर सुन्नसहोस् ॥५-६॥

हे अगस्त्य मुनि ! जसको जिब्राको टुप्पोमा नीलकण्ठ भन्ने यो पद बसेको हुन्छ, त्यो पवित्र तथा अपवित्र जे भए पनि परमपदमा पुग्छ। जुन मानिस एकचित्त भएर नीलकण्ठ कुण्डमा स्नान गर्न जान्छु भन्ने सोचेर घरबाट बाहिर निस्कन्छ, त्यस मानिसले अश्वमेध यज्ञ गरेको फल पाउँछ। स्नान गरेर बाटमा मऱ्यो भने त्यो शिवलोक जान्छ। सबै तीर्थमा स्नान गरेर नीलकण्ठ दहमा जसले साधारण स्नान गर्छ र भस्मले स्नान गर्छ, शिवजीको ध्यान गर्छ, रुद्राक्ष लगाउँछ, त्यसपछि आनन्दसित नीलकण्ठको तटमा निरन्तर एक लाख शिवमन्त्र जप गर्छ, त्यसले सबै यज्ञ, सबै तीर्थ, सबै दान र सबै धर्मबाट उत्पन्न हुने फल पाउँछ। बुद्धि भएको मानिसले एकपटक मात्रै स्नान गऱ्यो भने पनि करोडौं करोड पुण्य प्राप्त गरेर शिवलोकमा जान्छ ॥५-१३॥

---

१. त्वत्तो इति न.सं.पु.पाठः।
२. तेषां स्नानफलानि वच्मि ते इति न.सं.पु.पाठः।

शिववद्विचरेत्तत्र कल्पकोटिसहस्रशः। शिववत्पूज्यते देवैर्मरणं नास्ति तस्य च ॥
करोति दर्शनं कुण्डे नीलकण्ठस्य यो मुने ॥१४॥
सप्तजन्मार्जितैः पापैर्मुच्यते स न संशयः। सार्वभौमो नृपो भूत्वा भुनक्ति सकलं जगत् ॥१५॥
देहान्ते च परे स्थाने[३] रुद्रलोके महीयते। अपां यः स्पर्शनं गत्वा करोति तत्र भक्तितः[४] ॥१६॥
नीलकण्ठसुकुण्डस्य तस्य पुण्यफलं शृणु। बहुजन्मार्जितैः पापैर्मुच्यते सान्वयो ध्रुवम् ॥१७॥
सार्वभौमो मुहुर्भूत्वा भुनक्ति स सुखं बहु। यत्र कुत्रापि मर्त्योऽसौ तत्स्नायी म्रियते पथि ॥१८॥
याने चाऽऽस्थाय तद्दूतैर्नीयते रुद्रमन्दिरम्। कृत्वा यात्रां त्रिवारं यो नीलकण्ठह्रदे मुदा ॥१९॥
स्नानं करोति भक्त्या वै तस्य पुण्यफलं शृणु। युगकोटिसहस्राणि रुद्रलोके सुखं वसेत् ॥२०॥
देहान्ते स भवेद्योगी तदन्ते स पुनर्मुने। जनो जानाति सर्वोऽपि कुण्डस्थो धर्मजीवनः ॥२१॥
भक्त्या गृह्णाति यद्दत्तं प्रक्षिपति न चाऽन्यथा[५]। उमामहेश्वरयोर्मूर्त्ती दृश्येते दर्शने जले[६] ॥२२॥
भुक्तिमुक्तिप्रदे साक्षात् स्नातकेभ्यः कृपाकुले[७]। यः करोति नरः स्नानं नीलकण्ठह्रदे मुदा ॥२३॥
विधिपूर्वं सुधीस्तत्र तस्य पुण्यफलं शृणु। मुच्यते सर्वपापैः स त्रिविधैरात्मनः कृतैः ॥२४॥
हेतुभिश्च कृतैः पापैः पञ्चभिः पातकैस्तथा। दानधर्मव्रतानाञ्च यद्यत्पुण्यं[८] स्तवस्य च ॥२५॥
सर्वेषाञ्चैव तीर्थानां तत्तत्पुण्यफलं[९] स्मृतम्। कोटिकोटिगुणं पुण्यं तेषां लब्ध्वा नरः सुखम् ॥२६॥
अयुतार्कभयानस्थः शिवलोकं स गच्छति। कल्पकोटिशतं साग्रं शिवलोकं वसेत्सुखम् ॥२७॥
तदन्ते तस्य कामश्चेत् सार्वभौमो भविष्यति। सार्वभौमतनुं त्यक्त्वा स भविष्यति[१०] वेदवित् ॥२८॥

---

त्यो मानिस त्यहाँ हजार करोड कल्पसम्म शिवजस्तै भएर शिवलोकमा विचरण गर्छ, शिवजस्तै भएर देवताद्वारा सम्मानित हुन्छ, त्यसले मर्नुपर्दैन। जुन धीर पुरुषले नीलकण्ठकुण्डको दर्शन गर्छ, त्यो सात जन्मसम्म गरेका पापबाट मुक्त हुन्छ, यसमा सन्देह छैन। त्यसले राजा भएर सम्पूर्ण जगत्को भोग गर्न पाउँछ। जसले त्यहाँ गएर भक्तिपूर्वक कुण्डको जल स्पर्श गर्छ, मरेपछि उत्तम स्थान प्राप्त गरी रुद्रलोकमा ससम्मान बस्न पाउँछ। नीलकण्ठमा स्नान गर्दा प्राप्त हुने फल सुन– जसले त्यहाँ स्नान गर्छ, त्यो व्यक्ति धेरै जन्ममा गरेका पापबाट सपरिवार मुक्त हुन्छ। बारम्बार चक्रवर्ती राजा भएर त्यसले धेरै आनन्दको उपभोग गर्छ, त्यस कुण्डमा स्नान गर्ने व्यक्ति जुनसुकै ठाउँमा, बाटमा मऱ्यो भने पनि शिवजीका दूतले विमानमा राखेर त्यसलाई शिवलोकमा लैजान्छन्। जसले तीनपटक नीलकण्डकुण्डमा गउर भक्तिपूर्वक स्नान गर्छ, त्यसको पुण्य फल सुन। एक हजार करोड वर्षसम्म त्यो रुद्रलोकमा आनन्दसित बस्न पाउँछ। मरेपछि त्यो योगी हुन्छ ॥१४–२०॥

सबै मानिसलाई थाहा छ, कुण्डमा पार्वतीको पसिनाबाट आएका जल जमेको छ। त्यहाँ भक्तिपूर्वक दिइएको र चढाएको वस्तु अन्यथा हुँदैन अर्थात् फलदायी हुन्छ। हे मुनि ! त्यो जलमा उमा र महेश्वरको मूर्ति प्रत्यक्ष देखिन्छ। त्यस मूर्तिले स्नान गर्ने व्यक्तिलाई साक्षात् भुक्ति तथा मुक्ति दिन्छ। जुन बुद्धिमान् मानिसले नीलकण्ठ कुण्डमा विधिपूर्वक स्नान गर्छ, त्यसको पुण्यफल सुन्नुहोस्। त्यो व्यक्ति आफूले गरेका तीनै किसिमका पाप र जानी जानी गरेका पाँचवटा महापातकबाट मुक्त हुन्छ। त्यहाँ गरेको दान, धर्म र स्तुतिको पुण्य सम्पूर्ण तीर्थमा गरेको पुण्यबराबर हुन्छ भनेर बताइएको छ। करोडौं गुणा पुण्यलाई प्राप्त गरेर दश हजार सूर्यको जस्तो कान्ति भएको यानमा चढी आनन्दसित त्यो मानिस शिवलोकमा जान्छ। करोडौं कल्पभन्दा बढी त्यो शिवलोकमा आनन्दसित बस्छ। त्यसपछि उसले चाहना गऱ्यो भने चक्रवर्ती राजा हुन सक्छ। चक्रवर्ती राजाको शरीरलाई त्याग गरेपछि वेदज्ञ त्यो व्यक्ति फेरि त्यस कुण्डमा स्नान गरेर शिवजीमा नै लीन हुन्छ ॥२१–२८॥

---

३. परं स्थानम् इति न.सं.पु.पाठः।
४. य आपस्पर्शनं गत्वा तत्र करोति भक्तितः इति न.सं.पु.पाठः।
५. प्रक्षेपति तदन्यथा इति न.सं.पु.पाठः।
६. मूर्त्तिः प्रत्यक्षं तज्जले मुने इति न.सं.पु.पाठः।
७. भुक्तिमुक्तिप्रदं साक्षात् स्नातकेभ्यो ददाति तत् इति न.सं.पु.पाठः।
८. यावत्पुण्यम् इति न.सं.पु.पाठः।
९. सर्वेषां तीर्थज्ञानां तावत्पुण्यं फलम् इति न.सं.पु.पाठः।
१०. त्यज्य जनिष्यति स इति न.सं.पु.पाठः।

भूयः स्नानाच्च तत्कुण्डे शिवे लीनो भविष्यति। कृमिकीटपतङ्गाश्च वृक्षगुल्मलताश्च याः ॥२९॥
पशुपक्षिशिलाश्चैव मुक्तास्तज्जलमर्शनात्[११]। तज्जलस्पर्शनाद् ध्यानज्ञानहीना नरा अपि[१२] ॥३०॥
ततस्तनुञ्च सन्त्यज्य गच्छन्ति शिवमन्दिरे[१३]। अपि विवर्जिता ज्ञानैः स्थावराः पशुपक्षिणः ॥३१॥
तज्जलस्पर्शनान्मुक्ताः किमु ज्ञानयुता नराः। स्नानमात्रं नरस्तत्र यः करोति पठन्मनुम् ॥३२॥
स्नातकस्य च तस्याऽऽर्य पुनर्जन्म न विद्यते। श्राद्धं करोति यस्तत्र सदर्भतिलजीवनैः ॥३३॥
पिण्डं तत्पितरो लब्ध्वा मोदन्ते तृप्तिमागताः[१४]। यः करोति च तत्तीरे यज्ञं स्नात्वा सकृत्त्वपि ॥३४॥
कल्पायुतं वसेच्छैवे लोकेऽन्वयैः समं सुखम्। तदन्ते सार्वभौमोऽसौ भुक्त्वा भोगान् यथेप्सितान् ॥३५॥
उत्पत्स्यते[१५] द्विजो भूत्वा योगीश्वरः पुनस्त्वसौ। भविष्यति पुनः स्नातः तत्कुण्डेऽसौ शिवालये ॥३६॥
सर्वलोकसुखं भुक्त्वा मोक्षमन्ते च प्राप्नुयात्[१६]। यः करोत्यर्चनं कुण्डे भक्त्या पञ्चोपचारकैः ॥३७॥
उमया सहितं[१७] देवमुद्दिश्य तत्फलं शृणु। मोहकञ्चुकमुत्सृज्य ज्ञानकञ्चुकसंवृतः ॥३८॥
परिवारान्वयैर्युक्तो सुखं याति शिवालये। अयुतार्काभयानेन सेवित[१८]श्चाऽप्सरोगणैः ॥३९॥
गीतवाद्यरसोपेतैर्द्धूयमानो हि चामरैः। कल्पकोटिशतं दिव्यं शिवलोकं वसेत्सुखी ॥४०॥
ततो यास्यति निर्वाणं सर्वधर्मसुदुर्ल्लभम्। लक्षमेकं जपन्मन्त्रं तत्तटस्थः शिवात्मकः ॥४१॥
सुनिश्चितं[१९] धिया भक्त्या जीवन्मुक्तो न संशयः। मानुषोऽपि शिवः साक्षात्सर्वलोकैः प्रवन्दितः ॥४२॥
योनियन्त्रं परित्यज्य ज्योतीरूपे प्रलीयते।

---

जति पनि कीरा, फट्याङ्ग्रा, रुख, पोथ्रा, लहरा, पशु, पक्षी र शिलाहरू छन्, ती सबै त्यस कुण्डको जलको स्पर्शबाट मुक्त भएका छन्। ज्ञान नभएका पशु, पक्षी र शिलाले पनि त्यस कुण्डको जल स्पर्श गरे भने आफ्नो शरीर छाडेपछि तिनीहरू शिवलोक जान्छन्। ज्ञान नभएका स्थावर तथा पशुपक्षीहरूले पनि त्यस कुण्डको जलको स्पर्शले गर्दा आफ्नो शरीरत्यागपछि शिवलोकमा जान पाउँछन्। जुन ज्ञानवान् मानिसले त्यहाँ स्नान गर्छन्, तिनको के कुरा ? जसले त्यहाँ स्नान मात्रै गरेर मन्त्र जप्छ, त्यसरी स्नान गर्ने व्यक्तिको पुनर्जन्म हुँदैन। कुश, तिल र जल लिएर जसले त्यहाँ श्राद्ध गर्छ, त्यसका बाबुआमा पिण्ड प्राप्त गरेर तृप्त हुन्छन् अनि पितृलोकमा आनन्दसित बस्छन्। जसले त्यस कुण्डको तीरमा एकपटक मात्रै भए पनि स्नान गरेर यज्ञ गर्छ, त्यो मानिस एक कल्पसम्म आफ्ना परिवारका साथ शिवलोकमा बस्न पाउँछ। शिवलोकबाट खसेपछि त्यो मानिस चक्रवर्ती राजा भई इच्छा लागेको वस्तु भोग गरेर ब्राह्मण भई जन्मन्छ र फेरि योगीश्वर हुन्छ। फेरि यस शिवकुण्डमा स्नान गरेपछि सबैलाई आनन्द दिँदै त्यस व्यक्तिले मोक्ष प्राप्त गर्छ ॥२९-३६॥

जसले भक्तिपूर्वक पञ्चोपचार विधिले कुण्डमा उमामहेश्वरलाई लक्ष्य गरेर पूजा गर्छ, त्यसको फल सुन्नुहोस्। मोहको चोला छोडेर ज्ञानको चोलालाई अँगाल्ने त्यो व्यक्ति परिवारसितै शिवजीको लोकमा आनन्दसित जान्छ। दश हजार सूर्यको जस्तो तेजले युक्त भएको त्यो मानिस विमानमा बसेर अप्सराहरूद्वारा गीत, बाजा आदिले सुशोभित हुँदै, चामर हम्किँदै शिवलोक जान्छ। दिव्य करोडौँ सय कल्पसम्म त्यो शिवलोकमा बस्छ। त्यसपछि सबै धर्मले प्राप्त गर्न नसक्ने खालको मोक्षलाई प्राप्त गर्छ। जसले नीलकण्ठको तटमा शिव नै बनेर एक लाख मन्त्र भक्तिपूर्वक जप्छ, त्यो निश्चय नै जीवन्मुक्त हुन्छ, यसमा सन्देह छैन। मानिस भए तापनि सबै प्राणीहरूद्वारा पूजित त्यो व्यक्ति साक्षात् शिवजी नै हुन्छ। योनियन्त्रलाई छाडेर त्यो ज्योतिस्वरूपमा लीन हुन्छ ॥३७-४२½॥

---

११. मुक्तास्तत्पर्शनाज्जलम् इति न.सं.पु.पाठः।
१२. तज्जलस्पर्शनेभ्यस्ते ज्ञानविवर्जितास्त्वपि इति न.सं.पु.पाठः।
१३. शिवलोककम् इति न.सं.पु.पाठः।
१४. तृप्ता मोदन्ति तत्परे इति न.सं.पु.पाठः।
१५. जनिष्यति इति न.सं.पु.पाठः।
१६. सर्वलोकान्सुखं पश्यन् मोक्षपदं गमिष्यति इति न.सं.पु.पाठः।
१७. उमामहेश्वरम् इति न.सं.पु.पाठः।
१८. सेवय इति न.सं.पु.पाठः।
१९. सुनिश्चितः इति न.सं.पु.पाठः।

दीपं ददाति यः कुण्डे यानेन सूर्यवर्चसा ॥४३॥
गीतवाद्यस्तवैः सेव्यो रुद्रलोकं स गच्छति। कल्पकोटिशतं दिव्यं रुद्रलोके वसेन्मुदा ॥४४॥
सेवमानः शिवं चाऽन्ते तत्रैव लयमेष्यति[२०]। एकं द्वौ त्रीनथवा विप्रान् यथाशक्ति शतं दश[२१] ॥४५॥
भोजयेद् यश्च भोज्यानि भक्तिभिश्च चतसृभिः[२२]। शिवमुद्दिश्य तत्कुण्डं शिवञ्चैव स्मरन् धिया[२३] ॥४६॥
प्रीयतां भगवान् रुद्रश्चैवं यो भोजयेद् द्विजान्। मेदिन्यां यानि भोग्यानि भुङ्क्ते नूनं यथेप्सितान् ॥४७॥
सार्वभौमो नृपो भूत्वा तद्देहान्ते फलं शृणु। अयुतार्कभयानस्थश्चाऽप्सरोगणसेवितः ॥४८॥
पश्यंल्लोकान् सुराणां स शैवैर्गोत्रैः प्रगच्छति। कल्पकोटिशतं साग्रं रुद्रलोके महीयते ॥४९॥
द्रवद्विचरेत्तत्र भुक्त्वा भोगान् यथेप्सितान्। गङ्गादिसर्वतीर्थानि श्रावणीपूर्णिमादिने ॥५०॥
तत्कुण्डे हि समायान्ति कोटित्रयार्धकोटयः[२४]। सर्वपर्वसु तीर्थानि ग्रहणेषु विशेषतः ॥५१॥
सर्वकलाप्रयुक्तानि तिष्ठन्त्यागत्य तत्र वै। प्रयागे च कुरुक्षेत्रे नैमिषे चैव पुष्करे ॥५२॥
देवप्रयागतीर्थे च सागरादिषु सर्वशः। कोटिकोटिगुणं स्नात्वा चैत्रादिषु च यत्फलम्[२५] ॥५३॥
नीलकण्ठह्रदे स्नानात् तत्फलं प्राप्नुयुर्जनाः[२६]। सहस्रधा च गङ्गायां पिण्डदानस्य[२७] यत्फलम् ॥५४॥
नीलकण्ठे सकृत्स्नात्वा तत्फलं लभते मुने। वाञ्छन्ति पितरः सर्वे पिण्डं जलाञ्जलीनपि ॥५५॥
यदि तत्र सकृल्लब्ध्वा तृप्यन्त्यब्दशतं दिवि। ये कुर्वन्ति नराः स्नानं नीलकण्ठह्रदे मुदा ॥५६॥
यद्यदिच्छन्ति तत्तत्ते प्राप्नुवन्ति न संशयः[२८]। याः कुर्वन्ति स्त्रियः स्नानं तत्कुण्डे चित्तकामदे ॥५७॥
यं यं कामं च वाञ्छन्ति तं तं ताः प्राप्नुवन्ति च[२९]। ततः कामान्सुखं भुक्त्वा चाऽन्यलोकैः सुदुर्लभान् ॥५८॥

---

जसले बत्ती बाल्छ, त्यो व्यक्ति सूर्यजस्तै तेजिलो यानमा चढेर गीत, बाजा र स्तुतिद्वारा सेवित हुँदै रुद्रलोकमा जान्छ। करोडौं सय कल्पसम्म त्यो व्यक्ति आनन्दसित शिवजीको सेवा गर्दै रुद्रलोकमा बस्नेछ र अन्त्यमा शिवजीमा नै विलीन हुनेछ। यसरी दुई, तीन, दश अथवा सय जना ब्राह्मणलाई त्यहाँ जसले चारै किसिमका भोज्य पदार्थहरू दिएर तिनीहरूलाई शिवजी नै ठानी आनन्दसित भक्तिपूर्वक भगवान् रुद्र प्रसन्न हुनुहोस् भन्दै भोजन गराउँछ, त्यसले पृथ्वीमा जति इच्छा लागेका भोग्य वस्तु छन्, ती सबै वस्तु चक्रवर्ती राजा भएर भोग गर्न पाउँछ, मरेपछि के पाउँछ, त्यो कुरा सुन्नुहोस्। दश हजार सूर्यको कान्तिले युक्त भएको विमानमा बसेर अप्सराहरूद्वारा सुसेवित हुँदै त्यो व्यक्ति देवताका लोकहरूलाई हेर्दै शिवगणका साथ शिवलोकमा जान्छ। सय करोड कल्पभन्दा पनि बढी समय त्यसले रुद्रलोकमा ससम्मान बस्न पाउँछ, त्यहाँ त्यो रुद्रजस्तै बनेर सम्पूर्ण भोगहरू भोगी विचरण गर्छ। श्रावण पूर्णिमाको दिन गङ्गा आदि गरिएका साढे तेत्तीस करोड तीर्थहरू सबै त्यसै कुण्डमा आउँछन्। सबै पर्वहरूमा विशेष गरी ग्रहणको बेलामा सम्पूर्ण कलाले युक्त भएर सबै तीर्थ त्यहाँ आउँछन्। प्रयाग कुरुक्षेत्र, नैमिषारण्य, पुष्कर, देवप्रयाग र सागर आदि गरिएका सम्पूर्ण उत्तम तीर्थमा चैत्र महिनामा स्नान गर्दा जे जति फल प्राप्त हुन्छ, नीलकण्ठ कुण्डमा स्नान गर्दा त्यो भन्दा करोडौं गुणा बढी फल मानिसले प्राप्त गर्छ। हे अगस्त्य मुनि ! गङ्गामा हजारपटक स्नान गर्नाले जुन फल प्राप्त हुन्छ, नीलकण्ठकुण्डमा एकपटक स्नान गर्‍यो भने त्यो फल प्राप्त हुन्छ। सबै पितृहरू पिण्ड र तर्पण चाहन्छन्। तिनीहरूले त्यस ठाउँमा एकपटक मात्र भए पनि तर्पण र पिण्ड प्राप्त गरे भने सय वर्षसम्म स्वर्गमा तृप्त भएर बस्छन्। जुन मानिले नीलकण्ठकुण्डमा आनन्दसित स्नान गर्छन्, तिनीहरूले जे जे चाहन्छन्, त्यो त्यो पाउँछन्, यसमा सन्देह छैन। इच्छा पूर्ण गर्ने त्यस कुण्डमा स्त्रीजातिहरूले जुन जुन कामना गरेर स्नान गर्छन्, तिनीहरूले निश्चय नै ती ती फलहरू पाउँछन्। त्यसपछि तिनीहरू अरू प्राणीहरूका लाग दुर्लभ भएका सम्पूर्ण कामनाहरूको भोग गरी मरेपछि यानमा चढेर परमपदमा पुग्छन् ॥४३-५८॥

---

२०. सेवयंश्शिवपादाब्जं चान्ते तस्मिन्विलीष्यति इति न.सं.पु.पाठः।
२१. एवं द्वयं त्रयं वापि दश शतं द्विजाश्च यः इति न.सं.पु.पाठः।
२२. चतुर्विधैश्च भक्तितः इति न.सं.पु.पाठः।
२३. तेभ्यस्तानिति स्मरन् धिया मुदा इति न.सं.पु.पाठः।
२४. तिस्रः कोट्यर्धकोटयः इति न.सं.पु.पाठः।
२५. कुम्भज इति न.सं.पु.पाठः।
२६. स्नानाल्लभेयुर्मानुषाः फलम् इति न.सं.पु.पाठः।
२७. च पिण्डं दत्वा यत्फलम् इति न.सं.पु.पाठः।
२८. यं यमिच्छन्ति तं तं ते प्राप्यन्ति हि न संशयः इति न.सं.पु.पाठः।
२९. कामन्ति तं तं ताः प्राप्यन्ति हि च सुनिश्चितम् इति न.सं.पु.पाठः।

देहान्ते च परं स्थानं गच्छन्ति यानसंस्थिताः। धिग्जन्मानि च तेषाञ्च न कुर्वन्ति नराश्च ये ॥५९॥
नीलकण्ठह्रदे स्नानं लब्ध्वा देहं सुदुर्ल्लभम्। तेषां शरीरं भूलोके यातनायै भवेदपि[३०] ॥६०॥
न कुर्वन्ति ह्रदे स्नानं ये नीलकण्ठनामके[३१]। ये चाऽऽरोहन्ति धर्माद्रिं स्नातुं सप्तह्रदेषु च ॥६१॥
पदे पदेऽश्वमेधानां ते प्रास्यन्ति फलानि वै। दीपकुण्डं पयःकुण्डं यज्ञकुण्डं तथाऽपरम् ॥६२॥
धर्मकुण्डमहातीर्थं स्नानकुण्डं तथैव च। चन्द्रकुण्डञ्च सूर्याख्यं चन्द्रार्कौ तपतः पुरा ॥६३॥
ये कुर्वन्ति नराः स्नानं तेषां पुण्यफलं शृणु। सर्वदानमखार्चानां तीर्थानाञ्चैव यत्फलम् ॥६४॥
ते लब्ध्वा तत्फलं लोकं गौर्या गच्छन्ति यानगाः। धर्मतीर्थे तमाराध्य लक्षं यस्तन्मनुं जपेत् ॥६५॥
सदेहोऽसौ हि यानस्थो गौरीलोकं प्रगच्छति। उपवासश्च दानञ्च[३२] पूजनं तत्र यत्कृतम् ॥६६॥
हव्यं कव्यं जपः[३३] स्तोत्रं तत्सर्वञ्चाक्षयं भवेत् ॥६७॥
ततो भैरवकुण्डस्य माहात्म्यं वच्मि तेऽधुना। करोति तत्र यः स्नानं रुद्रलोकं स गच्छति ॥६८॥
हव्यं कव्यञ्च दानं च पूजनं च करोति च[३४]। अक्षयञ्च फलं लब्ध्वा शिवलोके वसेन्मुदा ॥६९॥
न चाऽभिभूयते पापैः स्नातकस्तत्र पातकैः स्नानाल्लभेत दिव्याभं देहं पापयुतोऽपि ना[३५] ॥७०॥
विष्णुकुण्डे नरः स्नात्वा विष्णुलोकं स गच्छति। सूर्यसन्निभयानस्थो विष्णुकन्याप्रसेवितः ॥७१॥
हव्यं कव्यं कृतं सर्वं दत्तं जप्तञ्च पूजितम्[३६]। द्विजानां भोजनं चैव[३७] तत्सर्वमक्षयं भवेत् ॥७२॥
एतत्सर्वं नरस्तत्र कृत्वा च फलवान् भवेत्[३८]। न पुनर्जायते यौनौ विष्णुवद्दिवि वै वसेत् ॥७३॥
ब्रह्मकुण्डे च यः स्नानं करोति भक्तिपूर्वकम्। पापकञ्चुकमुत्सृज्य ब्रह्मलोकं स गच्छति ॥७४॥
अध्यायमेतन्निखिलञ्च सम्यक् शृण्वन्ति ये भक्तियुता नरास्ते[३९]।
प्राप्स्यन्ति तत्स्नानफलानि सत्यम् चान्ते हि यास्यन्ति परं शिवं ते ॥७५॥
इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नीलकण्ठमाहात्म्यं नाम सप्तचत्वारिंशत्तमोऽध्यायः ॥४७॥

---

जसले दुर्लभ शरीर पाएर पनि नीलकण्ठ दहमा स्नान गर्दैनन्, त्यस्ता मानिसहरूको जन्मलाई धिक्कार छ। जसले त्यहाँ गएर स्नान तथा दर्शन गर्दैनन्, तिनीहरूको शरीर खालि यातनाका लागि मात्र हुन्छ। जुन मानिसहरू गोसाईंकुण्डमा रहेका सातवटै कुण्डमा स्नान गर्नका लागि धर्माद्रिमा जान्छन्, तिनीहरूले पाइलैपिच्छे अश्वमेध यज्ञ गरेको फल पाउँछन्। दीपकुण्ड, पयःकुण्ड, त्यस्तै अर्को यज्ञकुण्ड, धर्मकुण्ड महातीर्थ, स्नानकुण्ड, चन्द्रमाले तपस्या गरेको चन्द्रकुण्ड, सूर्यले तपस्या गरेको सूर्यकुण्डमा जसले स्नान गर्छन्, त्यसको पुण्यफल सुन्नुहोस्। सम्पूर्ण दान, यज्ञ, पूजा र तीर्थव्रत गर्नाले जुन फल प्राप्त हुन्छ, त्यो फल प्राप्त गरेर भक्तहरू अन्त्यमा विमानमा बसी गौरीको लोकमा जान्छन्। धर्मतीर्थमा जसले शिवको आराधना गरेर एक लाख मन्त्र जप्छ, त्यो व्यक्ति शरीरैसित विमानमा चढेर गौरीलोकमा जान्छ। दान, उपवास, पूजा, हव्य, कव्य, जप, स्तोत्रपाठ आदि त्यहाँ जे काम गरिन्छ, ती सबै अक्षय हुन्छन्। त्यसपछि अब म तपाईंलाई भैरवकुण्डको माहात्म्य बताउँछु। त्यहाँ जसले स्नान गर्छ, त्यो रुद्रलोकमा जान्छ ॥५९-६७॥

जसले त्यहाँ हव्य (देवतालाई अर्पण गरिने दान), कव्य (पितृलाई दिइने दान), पूजा र दान गर्छ, अक्षय फल प्राप्त गरेर आनन्दसित त्यसले शिवलोकमा बस्न पाउँछ। त्यहाँ स्नान गर्ने व्यक्तिलाई पापले कहिल्यै छुँदैन। अतिशय पातकी भए तापनि त्यसले दिव्य शरीर प्राप्त गर्छ। विष्णुकुण्डमा स्नान गर्ने मानिसहरू सूर्यजस्तै तेजिलो विमानमा बसेर विष्णुका सेविकाहरूद्वारा सेवित हुँदै विष्णुलोक जान पाउँछन्। त्यहाँ हव्य, कव्य, दान, जप, पूजा, ब्राह्मणभोजन जे गरिन्छ, त्यो सबै अक्षय हुन्छ। जसले यी सबै कार्य गर्छ, त्यसले फेरि कुनै पनि योनिमा जन्म लिनुपर्दैन। विष्णुजस्तै भएर स्वर्गमा बस्न पाउँछ। जसले ब्रह्मकुण्डमा भक्तिपूर्वक स्नान गर्छ, त्यो पापको कवचलाई फालेर ब्रह्मलोक जान पाउँछ। ईश्वरको चर्चा गरिएको यो सम्पूर्ण अध्याय जसले भक्तिपूर्वक सुन्छन्, तिनीहरूले त्यहाँ स्नान गरेको फल प्राप्त गर्छन् र अन्त्यमा तिनीहरू परम शिवलोकमा जान्छन् ॥६८-७४॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा नीलकण्ठको यात्रा गर्ने विधिनामक छयालिसौं अध्याय पूर्ण भयो।

---

३०. केवलं यातनायै स्यादेषां देहानि हेतवे इति न.सं.पु.पाठः।
३१. भवेयुर्ये न कुर्वन्ति स्नानं तत्र च दर्शनम् इति न.सं.पु.पाठः।
३२. दानञ्चैवोपवासञ्च इति न.सं.पु.पाठः।
३३. जपम् इति न.सं.पु.पाठः।
३४ हव्यकव्यानि पूजाञ्च दानं करोति तत्र यः इति न.सं.पु.पाठः।
३५. दिव्यं देहं लभेत् स्नानादतिपापयुतोऽपि च इति न.सं.पु.पाठः।
३६. हव्यकव्यकृतं सर्वं दत्तं जप्तञ्च पूजनम् इति न.सं.पु.पाठः।
३७. तत्र इति न.सं.पु.पाठः।
३८. लब्धञ्च कृतवान् फलम् इति न.सं.पु.पाठः।
३९. भक्तिभिरीशचिन्तम् इति न.सं.पु.पाठः।

# अष्टचत्वारिंशोऽध्यायः

## नीलकण्ठतीर्थयात्रामावश्यकविधिविधानादिवर्णनम्

स्कन्द उवाच

अथ वक्ष्ये पुनर्धीमन् स्नातकानां क्रमात्क्रमम्। नीलकण्ठमहातीर्थे स्नानस्य[१] प्राणिनां शृणु ॥१॥
वेत्रगङ्गाजले स्नात्वा तीर्थगः प्राग्यथाविधि। ततः कुशोदकं कुर्यात्सङ्कल्पं प्रतिगृह्य वै ॥२॥
एतदादिषु तीर्थेषु यथाकामं नरः सुधीः। स्नानमहं करिष्ये वै सङ्कल्प्यैवं व्रजेत्ततः ॥३॥
वेत्रगङ्गाजले मर्त्यः स्नानं करोति भक्तितः। इह लोकं परित्यज्य स्वर्गं गच्छति यानगः ॥४॥
रुद्रवेत्रोद्भवा गङ्गा देवर्षिभिः प्रसेविता। तस्याञ्च स्नानमात्रेण रुद्रलोके महीयते ॥५॥
हव्यकव्यार्चनं दानं मानवैस्तत्र[२] यत् कृतम्। उपवासः कृतो धीर[३] तत्सर्वमक्षयं स्मृतम् ॥६॥
वेत्रगङ्गाजलं पीत्वा नृणामाभ्यन्तरं सदा[४]। भवेच्छुचि यथा[५] गङ्गा धीमताञ्च घटोद्भव ॥७॥
ततो भूयः समागत्य भृगुपतनमार्गतः[६]। खननाद् रुद्रशूलेन जाते[७] तीर्थे फलप्रदे ॥८॥
स्नात्वा जप्त्वा मुदा युक्तो रुद्रगङ्गाजलोत्तमे। बहुपापैर्विनिर्मुक्तः स याति रुद्रमन्दिरम् ॥९॥
भृगुपतनतीरे यो दानहोमार्चनं मुदा। करोति तत्फलं सर्वं लब्ध्वा गच्छति चेश्वरम् ॥१०॥
राजते गिरिराजोऽसौ भृगुपातमनोहरः[८]। कैलासाद्रिर्यथा शम्भोर्गङ्गापातेन मूर्धनि[९] ॥११॥

---

## अध्याय - ४८

### नीलकण्ठतीर्थमा यात्रा गर्दा अपनाउनपर्ने विधि विधान

कार्तिक स्वामीले भन्नुभयो – हे बुद्धिमान् अगस्त्य ! अब नीलकण्ठ महातीर्थमा स्नान गर्न जाने प्राणीहरूको स्नानको क्रम बताउँछु, सुन्नुहोस्। वेत्रगङ्गाको जलमा तीर्थक्रमले पहिलोपटक विधिपूर्वक स्नान गर्नुपर्छ र कुश तथा जल लिएर सङ्कल्प गर्नुपर्छ। यस तीर्थबाट सुरु भएका तीर्थहरूमा इच्छाअनुसार म स्नान गर्छु, यस्तो सङ्कल्प गरेर बुद्धिमान् मानिसले त्यहाँबाट प्रस्थान गर्नुपर्छ। जसले वेत्रगङ्गा नदीको जलमा भक्तिपूर्वक स्नान गर्छ, त्यो मानिस यस लोकलाई छोडेपछि यानमा चढेर स्वर्ग जान्छ। भगवान् शङ्करले रोपेको वेतबाट उत्पन्न भएकी वेत्रगङ्गाको देवता र ऋषिहरूले पनि सेवा गर्छन्। त्यस नदीमा स्नान मात्रै गर्‍यो भने पनि रुद्रलोकमा ससम्मान बस्न पाइन्छ ॥१-५॥

हे धीर पुरुष ! त्यहाँ मानिसले भक्तिपूर्वक गरेको हव्य, कव्य, पूजा, दान, धर्म, उपवास सबै अक्षय हुन्छ। हे अगस्त्य मुनि ! वेत्रगङ्गाको जल पान गर्‍यो भने बुद्धिमान् मानिसको हृदय गङ्गाजस्तै पवित्र हुन्छ। त्यहाँबाट फेरि भीरको बाटो आएर रुद्रले त्रिशूल रोपेर उत्पन्न गरेको फलदायक तीर्थ रुद्रगङ्गाको जलमा स्नान गर्नुपर्छ। आनन्दपूर्वक त्यहाँ जप गर्‍यो भने धेरै पापबाट मुक्त भएर त्यो मानिस रुद्रलोकमा जान्छ। भृगुपतनको तीरमा जसले जप, होम, पूजा आनन्दसित गर्छ त्यो मानिस सम्पूर्ण फल प्राप्त गरेर ईश्वरमा लीन हुन्छ। शिवजीको जटाबाट झरेकी गङ्गाले जसरी कैलासपर्वत शोभायमान भएको छ त्यसैगरी भृगुपतनबाट झरेकी त्रिशूली गङ्गाले गिरिराज हिमालयको निरन्तर शोभा बढेको छ ॥६-११॥

---

१. स्नानाय इति न.सं.पु.पाठः।
२. नराणां तत्र इति न.सं.पु.पाठः।
३. धर्मोपोष्यो तथा धीर इति न.सं.पु.पाठः।
४. नृणामाभ्यन्तरोऽनिशम् इति न.सं.पु.पाठः।
५. शुचिर्भवेद्यथा इति न.सं.पु.पाठः।
६. वै भृगुपत्तनक्रमात् इति न.सं.पु.पाठः।
७. रुद्रशूलचखानाच्चोद्भवे इति न.सं.पु.पाठः।
८. भृगुपातनसन्ततम् इति न.सं.पु.पाठः।
९. मूर्द्धतः इति न.सं.पु.पाठः।

तदधश्च ततो गत्वा प्राक्कार्यं वपनं पुनः। कुर्यात्त्रिशूलगङ्गायां तीर्थयात्रोत्सवं जनः ॥१२॥
ततः स्नानं प्रकुर्यात्स तस्याञ्च विधिपूर्वकम्। कुशोदकं समादाय सङ्कल्प्य च पुरस्तथा ॥१३॥
तत्र स्नात्वा दिवं यान्ति सर्वपापैर्विवर्जिताः। मोहकञ्चुकमुत्सृज्य यानेन सूर्यवर्चसा ॥१४॥
मुनयो यत्र काङ्क्षन्ति नित्यस्नानं मुदान्विताः। नित्यमायान्ति देवाश्च स्नातुं तत्रैव कुम्भज ॥१५॥
हव्यकव्यार्चनं दानं तत्सर्वमक्षयं भवेत्। कृतं त्रिशूलगङ्गायां स्नातकैश्च[१०] सुभक्तितः ॥१६॥
एवं विधिं सकृत्कृत्वा स्नातको भक्तिपूर्वकम्। सूर्यायुताभयानस्थो गच्छतीशगृहं परम् ॥१७॥
स्नात्वा यथाविधि यात्री तस्यां भक्तियुतो मुदा। ततो व्रजेत् त्रिवेण्यां वै स्नातुञ्च तदधः पुनः ॥१८॥
तीर्थराजे महापूते त्रिगङ्गासङ्गमे शुभे[११]। गन्तव्यं तत्र वै भक्त्या सर्वलोकसुदुर्लभे ॥१९॥
स्नातव्यं तत्र पूर्वं वै भक्तिपूर्वं विचक्षणैः। ऋषितीर्थे सदा पूते सङ्कल्प्य च यथाविधि ॥२०॥
ऋषयस्तं न मुञ्चति त्रिगङ्गासङ्गमं मुने। स्नायते[१२] तत्र देवैश्च सगन्धर्वाप्सरोगणैः ॥२१॥
स्नान्ति तत्र सदा भक्त्या[१३] स्वर्गादागत्य भक्तिभिः। ब्रह्मादयः सुराः सर्वे हरपादार्चने रताः ॥२२॥
स्नात्वा तत्र प्रकुर्वन्ति हरपूजां महोत्सवैः। नित्यं गन्धर्वदैत्यास्ते गच्छन्ति स्वं स्वमालयम् ॥२३॥
तत्र जप्तं हुतं दत्तं पूजितं[१४] च नरोत्तमैः। अक्षयं तत्फलं प्राप्य मोदन्ते शिवसद्मनि ॥२४॥
ऋषितीर्थे ततः स्नात्वा त्रिशूलाद्रिं समाव्रजेत्। गिरिदर्शनमात्रेण सर्वपापैः प्रमुच्यते ॥२५॥
नत्वा गङ्गां तनुं यात्री दण्डवत्पातयेत् क्षितौ। प्रागोंनमः शिवायेति साष्टाङ्गं[१५] प्रणमेद् गिरिम् ॥२६॥

---

त्यसपछि भृगुपतन मुनि गएर तीर्थयात्रीले पहिले मुण्डन गर्नुपर्छ अनि त्रिशूल गङ्गामा स्नान गर्नुपर्छ। विधिपूर्वक स्नान गरेर कुश र जल लिएर त्यसभन्दा अगाडिका लागि सङ्कल्प गर्नुपर्छ। त्यहाँ स्नान गर्ने मानिसहरू सम्पूर्ण पापबाट मुक्त भएर मोहलाई छोडी सूर्यतुल्य यानमा बसेर स्वर्ग जान्छन् ॥१२-१४॥

हे अगस्त्य मुनि ! जहाँ मुनिहरू प्रसन्न भएर सधैँ स्नान गर्न चाहन्छन्, देवताहरू सधैँ त्यहाँ स्नान गर्न आउँछन्। त्रिशूलगङ्गामा स्नान गर्ने व्यक्तिले भक्तिपूर्वक गरेको हव्य, कव्य, पूजा, दान सबै अक्षय हुन्छ। यस विधिबाट एकपटक मात्रै भए पनि भक्तिपूर्वक स्नान गर्ने व्यक्ति सूर्यतुल्य यानमा बसेर भगवान्को परमधाममा जान्छ। विधिपूर्वक त्रिशूलगङ्गामा सभक्ति स्नान गरिसकेपछि त्यसभन्दा तल आउने त्रिवेणीमा तीर्थयात्रीले स्नान गर्न जानुपर्छ। गङ्गाको सङ्गम भएको सबै प्राणीका निमित्त दुर्लभ अत्यन्त पवित्र त्यस तीर्थराजमा भक्तिपूर्वक स्नानका लागि जानुपर्छ। विवेकशील मानिसले पहिले सङ्कल्प गरी भक्तिपूर्वक पवित्र ऋषितीर्थमा विधिपूर्वक स्नान गर्नुपर्छ ॥१५-२०॥

त्यस त्रिवेणीको सङ्गमलाई ऋषिहरूले कहिल्यै छाड्दैनन्। गन्धर्व, अप्सरा र देवताहरू सधैँ त्यहाँ स्नान गर्छन्। त्यहाँ स्वर्गबाट ब्रह्मा आदि गरिएका शिवपूजक देवताहरू आएर भक्तिपूर्वक स्नान गर्छन्। त्यहाँ आएर स्नान गरी ठूलो उत्सवका साथ सधैँ गन्धर्व र दैत्यहरू शिवजीको पूजा गर्छन् र आ-आफ्नो घर फर्कन्छन्। त्यहाँ गरेको जप, होम, दान, पूजा सबै अक्षय हुन्छ। मानिसहरूले त्यो फल प्राप्त गरेर मरेपछि मानिस मुक्त हुन्छ। यात्रीले भूमिमा शरीरलाई दण्डजस्तै लम्पसार तुल्याई नमस्कार गर्नुपर्छ र ॐ नमः शिवाय भनेर आठै अङ्गले त्रिशूलपर्वतको दर्शन गर्नुपर्छ ॥२१-२६॥

---

१०. स्नातकानाम् इति न.सं.पु.पाठः।
११. यत्र गङ्गासुसङ्गमे इति न.सं.पु.पाठः।
१२. स्नायन्ते इति न.सं.पु.पाठः।
१३. स्नायन्ते तत्र नित्यं वै इति न.सं.पु.पाठः।
१४. तत्र कृतं जपं होमम् इति न.सं.पु.पाठः।
१५. चाष्टाङ्गैः इति न.सं.पु.पाठः।

हेमभिभूषितशैलस्य[१६] यः करोति च दर्शनम् । सप्तजन्मार्जितैः पापैर्मुच्यते तत्क्षणान्मुने ॥२७॥
त्रिशूलाद्रिं ततः पश्यन्नारोहेत्तु[१७] शनैः शनैः । स्मरन् धिया शिवं साक्षाद् भुक्तिं मुक्तिं लभेत सः[१८] ॥२८॥
तस्याऽऽरोहणमात्रेण रुद्रलोके महीयते । गोसहस्रफलं लब्ध्वा निर्मुक्तः सर्वपातकैः ॥२९॥
रुद्रमन्त्रं जपन् धीमान् नीलकण्ठविचारणः[१९] । आरोहति स्तुवन् शैलं तस्य पुण्यफलं शृणु ॥३०॥
वाजपेयाश्वमेधानां यावन्ति च फलानि च । गवां सहस्रदानानां कन्यादानस्य वा पुनः[२०] ॥३१॥
स्वर्णतुलासहस्राणां दानस्य यत् फलं तथा[२१] । गवाश्वहस्तिदानानां सर्वदानस्य यत् फलम्[२२] ॥३२॥
तत्सर्वं च फलं पुण्यात् प्राप्नुयात् भाग्यवान्नरः । पदे पदे समारोहन् त्रैशूलं शाङ्करं गिरिम्[२३] ॥३३॥
देहिनाञ्च त्रिशूलाद्रिः पापपुण्यपरीक्षकः । जना आरोहणात् तस्य[२४] मुच्यन्ते सर्वकिल्विषैः ॥३४॥
गिरिसानु समालङ्घ्य विनायकान्तिकं व्रजेत् । तं प्रार्थयेद्वरं नत्वा येन विघ्नो विनश्यति[२५] ॥३५॥
नमो लम्बोदरार्याय शङ्करायाऽर्तिनाशिने । हेरम्बाय गणेशाय रुद्राज्ञापालकाय च ॥३६॥
विघ्नराज नमस्तेऽस्तु शीघ्रं नाशय मे श्रमम् । त्वत्प्रसादादहं देव द्रक्ष्यामि शाङ्करं[२६] ह्रदम् ॥३७॥
स्तुत्वैवं गणपं देवं विघ्नश्रमविनाशकम् । त्रिःपरिक्रम्य भूयस्तं नत्वा यात्री गिरिं व्रजेत् ॥३८॥
ततश्च भैरवस्थानं गत्वा तस्य[२७] स्तुतिं पुनः । कुर्याद्यस्य प्रसादाद्वै गन्तुं शक्तो भवेन्नरः ॥३९॥

---

हे अगस्त्य मुनि ! सुनले परिपूर्ण भएको यस पर्वतलाई जसले दर्शन गर्छ, सात जुनीसम्म गरेका पापबाट तुरुन्तै मुक्त हुन्छ । त्यसपछि विस्तार विस्तार त्रिशूलपर्वतलाई हेरेर मनमा भुक्ति र मुक्ति दिने भगवान् शङ्करलाई सम्झँदै पर्वत उक्लनुपर्छ । त्यहाँ चढ्नेबित्तिकै त्यो मानिस हजार गाई दान गरेको फल प्राप्त गरी सम्पूर्ण पापबाट मुक्त हुन्छ र अन्त्यमा रुद्रलोकमा गई ससम्मान बस्न पाउँछ । रुद्रमन्त्र जप्दै नीलकण्ठ भगवान्लाई सम्झिएर पर्वत चढ्ने मानिसले पाउने पुण्य फल सुन्नुहोस् ॥२७–३०॥

त्यसरी पहाड चढ्ने मानिसले वाजपेय यज्ञ र अश्वमेध यज्ञ गर्दा जुन फल पाउँछ, हजार गाई दान गर्दा जुन फल पाउँछ, कन्यादान गर्दा जुन फल पाउँछ, हजार तोला सुन दान गर्दा जुन फल पाउँछ, तीर्थ गर्दा जुन फल पाउँछ, कन्या, घोडा र हात्ती तथा अन्य वस्तु दान गर्दा जुन फल पाउँछ, ती सबै जति पनि पुण्य छन्, ती सबै त्यसले पाइलैपिच्छे पाउँछ र सजिलैसित त्रिशूलपर्वतमा चढ्न सक्छ । त्रिशूलपर्वत प्राणीहरूको पाप र पुण्यको परीक्षा गर्ने थलो हो । विस्तारै त्यो पर्वतमा आरोहण गऱ्यो भने सम्पूर्ण पापबाट प्राणीहरू मुक्त हुन्छन् । त्यस पर्वतलाई नाघेर विनायकको नजिकै जानुपर्छ । उहाँलाई प्रणाम गरेर वर माग्नुपर्छ । त्यसो गऱ्यो भने सबै विघ्न नाश हुन्छन् । हे पूज्य लम्बोदर ! हे कल्याणकारी पीडानाशक गणेश ! शिवका आज्ञापालक हे हेरम्ब ! हजुरलाई नमस्कार छ ॥३१–३६॥

हे विघ्नराज ! हजुरलाई नमस्कार छ । चाँडै मेरो थकाइ मेटाइदिनुहोस् । हजुरको कृपाले म शिवजीको दह देख्न पाउनेछु । तीर्थयात्रीले विघ्न र श्रमलाई हटाउने भगवान् गणेशलाई यसरी स्तुति गरेपछि तीनपटक परिक्रमा गरेर नमस्कार गरी पर्वत उक्लनुपर्छ । त्यसपछि भैरवस्थानमा गएर उहाँको स्तुति गर्नुपर्छ जसको कृपाले मानिस सजिलैसित गोसाईंकुण्डमा जान सक्छ ॥३७–३९॥

---

१६. हेमभूषितं शैलम् इति न.सं.पु.पाठः ।
१७. पश्यन्नारोहयेत् इति न.सं.पु.पाठः ।
१८. साक्षाद्भुक्तिमुक्तिप्रदायकम् इति न.सं.पु.पाठः ।
१९. नीलकण्ठसुचिन्तनः इति न.सं.पु.पाठः ।
२०. कन्यानाञ्च तथा पुनः इति न.सं.पु.पाठः ।
२१. तीर्थानां तानि सर्वशः इति न.सं.पु.पाठः ।
२२. सर्वदानप्रदानानां कन्याश्वहस्तिनां तथा इति न.सं.पु.पाठः ।
२३. तेषां पुण्यानि यावद्वै सन्ति यात्री फलानि तत् ।
२४. शनैश्चारोहणात्तं ते इति न.सं.पु.पाठः । पदे पदे लभेत्सर्वं गिरिमारोहयत्सुखम् इति न.सं.पु.पाठः ।
२५. विघ्नं प्रणाशयेत् इति न.सं.पु.पाठः ।
२६. दर्शिष्यामि शिवम् इति न.सं.पु.पाठः ।
२७. तस्मै इति न.सं.पु.पाठः ।

नमो भिन्नाञ्जनाभाय महाकायाय द्रंष्टिणे[२८]। कल्पान्तकाग्निनेत्राय क्षेत्रपालाय वै नमः ॥४०॥
नमो भैरवदेवाय शत्रुभ्यो भयदाय च। नमस्त्रिशूलहस्ताय रौद्राय मुण्डमालिने ॥४१॥
त्वत्प्रसादाच्च देवेशं द्रक्ष्यामि तद्ध्रदं तथा[२९]। अनुज्ञा दीयतां मह्यं येन विघ्नो विनश्यति ॥४२॥
ततः प्रपश्य तत्कुण्डं जलरूपं महेश्वरम्। दुर्लभं सर्वभूतानां पापात्मनां विशेषतः ॥४३॥
प्रणमेच्चाऽनिशं पूर्वमष्टाङ्गक्षितिपातनैः। भूत्वा च दण्डवद् भूमौ कुर्याद् भक्त्या स्तुतिं पुनः ॥४४॥
स्मरणादालये स्नातुं गमनाद्धि गृहात्क्रमात्। दर्शनात्स्पर्शनात्स्नानात्कोटिगुणं फलम् ॥४५॥
ॐ नमो नीलकण्ठाय त्रिलोचनाय शम्भवे। शूलहस्ताय रुद्राय देवेशाय नमो नमः ॥४६॥
वृषारूढाय देवाय सर्वेश्वर नमोऽस्तु ते। निरञ्जनाय नीराय नीरप्रशायिने नमः ॥४७॥
इति स्तुत्वा शिवं ध्यायेत्कुण्डमध्ये व्यवस्थितम्। नीलग्रीवं महादेवं देवेशं जलरूपिणम् ॥४८॥
ॐ नीलकण्ठं वृषारूढं शूलहस्तं महाबलम्। जटामुकुटमूर्द्धानं चन्द्रार्द्धकृतशेखरम् ॥४९॥
देवदेवं सुरश्रेष्ठं सर्वाभरणभूषितम्। चन्दनैर्लिप्तकं देवं दिव्यवस्त्रैरलङ्कृतम् ॥५०॥
नीलकण्ठं महाकान्तं सूर्यकोटिसमप्रभम्। त्रिनेत्रं दशहस्तञ्च नागयज्ञोपवीतिनम् ॥५१॥
तुषाराभं महादेवं सर्वायुधोपशोभितम्। विभूतिभूषितं देवं पञ्चास्यं मुण्डमालिनम् ॥५२॥
पिनाकिनं महेशानं वरप्रदं जगद्गुरुम्। योगिगम्यं महासूक्ष्मं सर्वदेहगुहाशयम् ॥५३॥
जिह्वाग्रे सन्ति वेदाश्च हृदये भुवनत्रयम्। रोमाग्रे मुनयो देवाः ससिद्धा यक्षराक्षसाः ॥५४॥

---

गाजलको जस्तो कान्ति भएका, ठूलो शरीर र राम्रो दाँत भएका, प्रलयकालको अग्निजस्ता आँखा भएका हे क्षेत्रपाल ! हजुरलाई नमस्कार छ। शत्रुलाई त्रास देखाइदिने भैरव देवतालाई नमस्कार छ। त्रिशूल हातमा लिई मुण्डमाला धारण गरेका रुद्रलाई नमस्कार छ। हजुरको कृपाले म शिवजी बस्नुभएको त्यो तलाउ देख्न पाउँछु। त्यसैले मलाई त्यहाँ जाने आज्ञा दिनुहोस्, जसले गर्दा मेरो विघ्न नाश हुनेछ। त्यसपछि सबै प्राणीका निमित्त विशेष गरी पापीहरूका निमित्त दुर्लभ भएको जलस्वरूप त्यो कुण्ड र भगवान् शङ्करलाई पृथ्वीमा आठै अङ्ग सुताएर भक्तिपूर्वक बारम्बार दण्डवत् प्रणाम गर्नुपर्छ र त्यसपछि सभक्ति स्तुति गर्नुपर्छ। घरमा सम्झदा, घरबाट हिँड्दा, दर्शन गर्दा, स्पर्श गर्दा र स्नान गर्दा करोडौं गुणा उत्तरोत्तर फल प्राप्त हुन्छ ॥४०-४५॥

घाँटीमा नीलो वर्ण भएका तीन आँखा हुने त्रिनयन शम्भुलाई नमस्कार छ। त्रिशूल हातमा लिने रुद्रस्वरूप भएका देवतालाई बारम्बार नमस्कार छ। हे सर्वेश्वर ! साँढेमाथि चढेका देवता हजुरलाई नमस्कार छ। निरञ्जन जलस्वरूप भएका जलमा शयन गर्ने भगवान्‌लाई नमस्कार छ। यसरी कुण्डको बीचमा बसेका शिवजीको स्तुति गरेर जलरूप भएका नीलो घाँटी हुने देवताका अधिपति महादेवको ध्यान गर्नुपर्छ। नीलो घाँटी भएका, गोरुमाथि सवार भएका, हातमा त्रिशूल लिएका, अत्यन्त बलिया, जटा र मुकुट शिरमा धारण गरेका, अर्धचन्द्रले सुशोभित शिर भएका, देवताका पनि देवता, देवताहरूमा श्रेष्ठ भएका, सम्पूर्ण गहनाले भूषित भएका, चन्दन लगाएका र दिव्य वस्त्रले अलङ्कृत भएका महादेवको ध्यान गर्नुपर्छ ॥४६-५०॥

अत्यन्त तेजस्वी, करोडौं सूर्यको जस्तो कान्ति भएका, तीन आँखा र दश हात भएका, नागको जनै लगाएका, हिउँको जस्तो कान्ति भएका, सम्पूर्ण शस्त्रले सुसज्जित, ऐश्वर्यले युक्त पाँच मुख भएका, मुण्डमाला लगाएका नीलकण्ठ महादेवलाई ध्यान गर्नुपर्छ। पिनाक धनुष हातमा लिएका, सबैभन्दा ठूला ईश्वर, संसारका वन्दनीय, वरदाता, योगीले मात्र भेट्टाउन सक्ने, अत्यन्त सूक्ष्म, सबै प्राणीहरूको मनभित्र बस्ने महादेवको ध्यान गर्नुपर्छ। यिनै महादेवका जिब्राको टुप्पामा वेदहरू छन्, हृदयमा तीनै भुवन बसेको छ र रौंको टुप्पामा मुनि, देवता, सिद्ध, यक्ष अनि राक्षस बसेका छन् ॥५१-५४॥

---

२८. महाकायसुदंष्ट्रिणे इति न.सं.पु.पाठः। २९. दर्शिष्यामि च तद्ध्रुवम् इति न.सं.पु.पाठः।

पादयोर्यस्य पातालमाकाशो मस्तके तथा। स्कन्धयोश्च दिशः सर्वाश्चन्द्रार्क्कौ यस्य लोचने[३०] ॥५५॥
सेवमानाश्च[३१] तिष्ठन्ति तमीशं देवयोषितः। ब्रह्मा विष्णुश्च देवाश्च सभायां परिवेष्टिताः ॥५६॥
शङ्खदुन्दुभिनिर्घोषैः काहालभेरिमर्दलैः। पटहतालवीणाभिर्मृदङ्गध्वनिभिस्तथा ॥५७॥
गीतवाद्यमहोल्लासैः गन्धर्वैश्चाऽप्सरोगणैः। अणिमादिगुणैर्युक्तं देवं सर्वैः[३२] प्रसेवितम् ॥५८॥
ध्यात्वा चैवं महादेवं कुण्डे भक्त्या नरो मुदा। नीलकण्ठह्रदे नूनं स्नानं कुर्याद्विचक्षणः ॥५९॥
नीलकण्ठस्य माहात्म्यं यः शृणोति च भक्तितः। तत्र स्नानफलं मर्त्यः सम्प्राप्नोति न संशयः ॥६०॥
श्रद्धापूर्वं नरः श्रुत्वा सर्वपापैः विवर्जितः। शिवभक्तिरतो नित्यं शिवलोकं स गच्छति ॥६१॥
निमज्जनत्रयं कृत्वा स न पश्यति संसृतिम्। लब्ध्वा फलञ्च कोटीनां राजसूयाश्वमेधयोः ॥६२॥

एतत्तु धीमन् कथितञ्च सर्वं ते नीलकण्ठस्य मया महत्त्वम्।
पृष्टं त्वया यत्सकलञ्च मह्यं नद्याश्च घर्मोद्भवनिम्नगायाः ॥६३॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नीलकण्ठमाहात्म्ययात्राप्रकरणं नामाष्टचत्वारिंशोऽध्यायः ॥४८॥

---

हे अगस्त्य मुनि ! जसको पाउमा पाताल छ, निधारमा आकाश छ, दुईवटा काँधमा दिशाहरू छन्, चन्द्रमा र सूर्य जसका आँखा छन्, ती महादेवको ध्यान गर्नुपर्छ। ब्रह्माजी, भगवान् विष्णु र देवताहरू भगवान् नीलकण्ठलाई घेरेर सभामा बस्नुहुन्छ र सुरसुन्दरीहरू संसारका स्वामी भगवान् नीलकण्ठको सेवा गरिरहेका हुन्छन् ॥५५-५६॥

शङ्ख, दमाहा, काहल, भेरी, मादल, नगरा, ताल, वीणा, मादल आदि बाजाको ध्वनि र गानाबजाना आदि उत्सवद्वारा गन्धर्व तथा अप्सराहरूले अणिमादि गुणले युक्त भएका भगवान् शङ्करलाई सधैँ सेवा गरिरहेका हुन्छन्। यसरी कुण्डमा रहेका महादेवलाई भक्तिपूर्वक ध्यान गरेर विवेकशील मानिसले प्रसन्न हुँदै नीलकण्ठ दहमा स्नान गर्नुपर्छ। जसले भक्तिपूर्वक नीलकण्ठ भगवान्को माहात्म्य सुन्छ, त्यस मानिसले त्यहाँ गरेको स्नानको फल पाउँछ, यसमा शङ्का छैन ॥५७-६०॥

मानिसले श्रद्धापूर्वक यो अध्याय सुन्यो भने सम्पूर्ण पापबाट मुक्त हुन्छ। शिवभक्तिमा सधैँ लीन भएर त्यो मानिस शिवलोक जान्छ। तीनपटक नीलकण्ठ दहमा डुबुल्की लगाउने यात्रीले करोडौँ राजसूय र अश्वमेध यज्ञ गरेको फल प्राप्त गर्छ। त्यसले फेरि यो संसार हेर्नुपर्दैन। हे बुद्धिमान् अगस्त्य ! तपाईंले मसँग सोधेको नीलकण्ठको सबै माहात्म्य बताएँ। त्यस्तै धर्मधारा र अरू नदीको माहात्म्य पनि मैले बताएँ ॥६१-६३॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डको नीलकण्ठमाहात्म्य र नीलकण्ठयात्राप्रकरणनामक अठ्चालिसौं अध्याय पूर्ण भयो।

---

३०. लोचनौ इति न.सं.पु.पाठः।
३१. सेवयन्त्यत्र इति न.सं.पु.पाठः।
३२. देवञ्चैतैः इति न.सं.पु.पाठः।

# ऊनपञ्चाशत्तमोऽध्यायः

यशोधारामहिमा

अगस्त्य उवाच

त्वत्प्रसादात् श्रुतं स्कन्द ! धर्मधाराप्रशंसनम्। नीलकण्ठस्य माहात्म्यं सर्वदेवैः प्रपूजितम् ॥१॥
यन्माहात्म्यं समाकर्ण्य प्राप्नोति वाञ्छितं फलम्। प्राणिनां दुःखदग्धानां मोक्षामृतप्रवर्षकम् ॥२॥
भूयोऽहं श्रोतुमिच्छामि त्वत्तो ब्रह्मर्षिसेविताम्। यशोधाराप्रशंसाञ्च यया प्राप्नोति सद्गतिम् ॥३॥

स्कन्द उवाच

मुने ! साधु प्रवक्ष्यामि यत्त्वन्मां परिपृच्छसि। एकचित्तः समाधाय शृणु मत्तो महामनाः ॥४॥
अभूद्युद्धं पुरा विप्र ! तुमुलं लोमहर्षणम्। त्रैलोक्यभीतिदं तीव्रं रुद्रत्रिपुरदैत्ययोः ॥५॥
त्रैलोक्यस्थान् सुरान् सर्वान् विद्राव्य स्वौजसा मुहुः। चकार त्रिपुरो राज्यं स्वर्गे व्योम्नि रसातले ॥६॥
ततो रुद्रश्च तच्चेष्टां प्रेक्ष्य शून्यं सुरालयम्। क्रोधेन मूर्च्छितो देवो यत्रासुरः समागतः ॥७॥
रुद्रः पाशुपतास्त्रेण ददाह तं महासुरम्। निर्जित्य युधि दैत्यांश्च ब्रह्मणो वरदर्पितम् ॥८॥

अगस्त्य उवाच

कथं तस्मै वरो दत्तो[1] ब्रह्मणा लोकजन्मना। दुःखाय सर्वदेवानां जानतापि महात्मना ॥९॥
कस्मिन्तीर्थे तपस्तप्तं तेनासुरबलीयसा। कथञ्च तोषितो ब्रह्मा सर्वस्रष्टा स एव च ॥१०॥

स्कन्द उवाच

त्रिपुराख्यो महादैत्यः सूर्यनाभस्तथापरः। चन्द्रनाभो महावीर्यः कश्यपस्य सुतास्त्रयः ॥११॥
ब्रह्मपादाब्जसम्भूता हिमवत्पर्वते[2] पुरा। ब्रह्मपादोद्भवा पुण्या ब्रह्मपदी तथा स्रवा ॥१२॥

---

अध्याय – ४९

यशोधाराको महिमा र त्रिपुरदाह

अगस्त्य मुनिले भन्नुभयो – हे कार्तिक स्वामी ! हजुरको कृपा बाट धर्मधाराको माहात्म्य र सबै देवताले पूजा गरिएका भगवान् नीलकण्ठको माहात्म्य सुने। मोक्षरूपी अमृतको वर्षा गर्ने यो माहात्म्य सुन्यो भने दुःखले डढेका प्राणीहरूले आफूलाई इच्छा लागेको फल पाउन सक्छन्। ब्रह्मर्षिका पनि पूज्य हजुरबाट म फेरि यशोधाराको माहात्म्य र त्यसबाट प्राप्त हुने सद्गतिका बारेमा सुन्न चाहन्छु ॥१–३॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! तपाईंले जुन कुरा मसित सोध्नुभयो, म राम्रोसित बताइदिन्छु। हे मनस्वी ! एकचित्त भई खूबसित ध्यान दिएर सुन्नुहोस्। अघि रुद्र र त्रिपुरासुर दैत्यको तीनै लोकमा त्रास पैदा गर्ने रोमाञ्चकारी ठूलो युद्ध भएको थियो। तीनै लोकमा रहेका सबै देवताहरूलाई आफ्नो पराक्रमले लघारेर त्रिपुरासुरले आकाश, स्वर्ग र पृथ्वीमा राज्य गरेको थियो। त्यसपछि स्वर्गको शून्य अवस्था र त्यस दैत्यका क्रियाकलापहरूलाई देखेर भगवान् शङ्कर अत्यन्त क्रुद्ध हुनुभयो र जहाँ राक्षस थियो, त्यसै ठाउँमा आउनुभयो। ब्रह्माको वरले मातेको त्रिपुरासुर र अरू दैत्यहरूलाई युद्धमा जितेर भगवान् शङ्करले पाशुपतास्त्रद्वारा त्यस शहरलाई भस्म गराउनुभयो ॥४–८॥

अगस्त्य मुनिले भन्नुभयो – हे मनस्वी कार्तिक स्वामी ! संसारको सृष्टि गर्ने ब्रह्माले सबै देवताहरूलाई दुःख हुन्छ भन्ने कुरा जान्दाजान्दै पनि कसरी त्रिपुरेश्वरलाई वर दिनुभयो ? त्यो बलवान् राक्षसले कुन तीर्थमा तपस्या गर्‍यो र कसरी सम्पूर्ण प्राणीका स्रष्ट्य ब्रह्मालाई खुसी तुल्यायो ॥९–१०॥

कार्तिक स्वामीले भन्नुभयो – त्रिपुर नाम गरेको दैत्य, त्यस्तै अर्को सूर्यनाभ नाम गरेको दैत्य र चन्द्रनाभ नाम गरेको पराक्रमशाली दैत्य गरी कश्यपका तीनवटा छोरा थिए। हिमालयमा ब्रह्माको पवित्र पाउको धूलाबाट पैदा भएको ब्रह्मपदी नाम गरेको नदी छ ॥११–१२॥

---

१. वरं दत्तम् इति न.सं.पु.पाठः।
२. ब्रह्मस्वेदोद्भवा पुण्या हिमवन्निर्मिते इति न.सं.पु.पाठः।

त्रिशूलगङ्गया सार्धं तयोश्च सङ्गमे शिवे। त्रिपुराख्या महापूते तप्तुं तत्राऽऽगमन्मुदा ॥१३॥
सहस्राब्दं यशोधारातीरे कृत्वा महत्तपः[३]। भक्त्या जपन्तस्तन्मन्त्रान् ते समाराधयन् विधिम्[४] ॥१४॥
आविर्भूतस्ततो ब्रह्मा तेभ्यो दातुं वरान् विभुः। ययाचिरेऽपि तं दृष्ट्वा वरान् यथेप्सिताञ्च ते ॥१५॥

त्रिपुरासुरा ऊचुः

त्रिषु लोकेषु चास्माकं तिष्ठन्तु शासनेऽमराः। भविष्यन्त्वसमर्थास्तेऽस्माभिर्योद्धुं समं सदा ॥१६॥
लोकान्ते युगपन्मृत्युरस्माकं न पृथक् पृथक्। नोऽज ! निष्कण्टकं राज्यं[५] भवत्विति च दीयताम् ॥१७॥

स्कन्द उवाच

ओमिति वै प्रतिश्रुत्य ततः पितामहो मुने। दत्वा वरांश्च दैत्येभ्यस्त्वन्तर्धानं ययौ तदा ॥१८॥
ततस्तेऽपि वरान् लब्ध्वा ब्रह्मणश्च यथेप्सितान्। चक्रुस्त्रिभुवने राज्यं निर्जित्य सकलान् सुरान् ॥१९॥
दशवर्षसहस्राणि व्याप्य राज्यञ्च दानवाः। चक्रुर्विद्राव्य ते देवान्स्वबलैर्निर्जितान् युधि ॥२०॥
भूमौ विन्ध्याचले व्योम्नि सृष्ट्वा[६] राज्यं पुरत्रयम्। त्रयोऽसुरा मुदा चक्रुर्बहुवर्षं पृथक् पृथक् ॥२१॥
ततस्तेऽपि तदा स्वर्गं लुण्ठन्ति स्म बलात् क्रुधा[७]। विद्राव्य त्रिदशान्नित्यं स्वराज्येभ्यश्च हेतुभिः ॥२२॥
ततो दुःखातुरा दैवाद्[८] भ्रष्टराज्याः पराजिताः। सम्भूय सर्वदेवाश्च मन्त्रयामासुरार्य ते ॥२३॥
ततः शक्रादयो देवाः शङ्करं शरणं ययुः। कथयन्ति स्म तच्चेष्टां भ्रष्टराज्यास्तदर्दिताः ॥२४॥
समाकर्ण्य च तद्वार्त्तां जानन्नपि महेश्वरः। आश्वासयच्च तान् धीमन् तद्भयगद्गदस्वरान्[९] ॥२५॥
आज्ञापयत्ततो रुद्रो युद्धाय तांस्तदाऽऽशु च। निर्गच्छन्तु सुरा योद्धुं मया सह रथैर्द्रुतम् ॥२६॥
क्रियतां भोऽमराः स्नानं यशोधारासुसङ्गमे। सन्नह्यन्ताञ्च कवचैर्भविष्यति जयश्च नः ॥२७॥
इति श्रुत्वा वचो देवा महादेवस्य साम्प्रतम्। ययुः स्नातुं रथैर्धीमन् ! पुरोधाय शिवं तदा ॥२८॥

---

त्रिशूलगङ्गासित मिलेको ती दुई नदीको सङ्गम भएको पवित्रस्थलमा त्रिपुरासुर आदि दैत्यहरू सहर्ष तपस्या गर्न गए। यशोधाराको तीरमा ब्रह्माजीको मन्त्र जपेर भक्तिपूर्वक उहाँको आराधना गर्दै आनन्दसित तिनीहरूले एक हजार वर्षसम्म तपस्या गरे। त्यसपछि वर दिनका निमित्त ब्रह्माजी प्रादुर्भाव हुनुभयो। उहाँलाई देखेर तिनले आफूलाई इच्छा लागेका वरहरू माग्यो ॥१३-१५॥

त्रिपुरासुर आदि दैत्यहरूले भने – तीनै लोकमा देवताहरूमाथि हाम्रो शासन चलोस्। हामीसँग लड्न तिनीहरू कहिल्यै नसकून्। हाम्रो राज्य अकण्टक बनोस्, अन्त्यमा हामीहरूको एकैचोटि मृत्यु होस्, छुट्टाछुट्टै होइन, यही वर हामीलाई दिनोस् ॥१६-१७॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! त्यसपछि ब्रह्माजीले हुन्छ भनेर ती दैत्यलाई वर दिई अन्तर्धान हुनुभयो। तिनीहरूले ब्रह्माजीबाट वर प्राप्त गरेर सम्पूर्ण देवताहरूलाई जिते अनि तीनै लोकमाथि राज्य गरे। राक्षसहरूले दश हजार वर्षसम्म युद्धमा आफ्नो बलले देवताहरूलाई जितेर राज्य गरे। पृथिवीमा पनि विन्ध्याचलमाथिको आकाशमा तीनवटा शहरको सिर्जना गरेर ती राक्षसहरूले धेरै वर्षसम्म आनन्दसित छुट्टाछुट्टै राज्य गरे। आफूले राज्य गर्नका लागि उनीहरूले देवताहरूलाई लखेटेर सबै स्वर्ग पनि लुटेका थिए ॥१८-२२॥

हे अगस्त्य मुनि ! त्यसपछि राज्यभ्रष्ट भएर हार खाएका पीडित देवताहरूले आपसमा मिलेर सल्लाह गरे। राज्यभ्रष्ट भएका, दैत्यबाट पीडित इन्द्र आदि देवताहरू भगवान् शङ्करको शरणमा गए र ती दैत्यका सबै वृत्तान्त बताए। सबै कुरा थाहा हुँदाहुँदै पनि भगवान् शङ्करले तिनीहरूको कुरा सुन्नुभयो। उहाँले राक्षसको भयले गर्दा गद्गद स्वरले कुरा गरिरहेका ती देवताहरूलाई आश्वासन पनि दिनुभयो। त्यसपछि भगवान् शङ्करले तिनीहरूलाई तुरुन्त मसित रथमा चढेर युद्ध गर्न हिँड भन्नुभयो। हे देवता हो ! यशोधारा नदीको सङ्गमस्थलमा स्नान गर, त्यसपछि कवच लगाओ, हाम्रो विजय अवश्य हुन्छ। हे बुद्धिमान् अगस्त्य ! महादेवको वचन सुन्नासाथ देवताहरू शिवजीलाई अगाडि लगाएर रथमा चढी स्नान गर्न गए ॥२३-२८॥

---

३. तपः सुतेपिरे इति न.सं.पु.पाठः।
४. भक्तिभिर्जप्य तन्मन्त्राण्यासधयद्विधिं मुदा इति न.सं.पु.पाठः।
५. निष्कण्टकञ्च नो राज्यम् इति न.सं.पु.पाठः।
६. सृज्य इति न.सं.पु.पाठः।
७. स्वर्गमवलुण्ठन्ति सर्वशः इति न.सं.पु.पाठः।
८. देवा इति न.सं.पु.पाठः।
९. तद्भयं तद्गदोदितान् इति न.सं.पु.पाठः।

धर्मधारायशोधारानद्योः सुसङ्गमे शिवे। सस्नुर्जेपुः सुरास्तत्र प्रार्थयन्तो वरान् तदा[१०] ॥२९॥
सन्नह्य कवचैर्देवाः सर्वशस्त्रास्त्रसंयुताः। स्वर्णरथेषु चाऽऽस्थाय सिंहनादैर्विनिर्ययुः ॥३०॥
दृष्ट्वा समागतं सैन्यं सिंहनादमहोत्सवम्। देवानां चन्द्रनाभो हि क्रोधेन सम्मुमूर्च्छ सः ॥३१॥
आहूय सर्वसैन्यं स सूर्यनाभं तथाऽपरम् । युयुधुः सह देवैस्ते निरातङ्कं जयैषिणः ॥३२॥
बाणवर्षां ततो देवाः प्रचक्रुश्चाऽसुरेषु च। स्वर्णपुङ्खैः शिलाघातैः स्वस्वनामाङ्कितैः शरैः ॥३३॥
ववृषुर्दानवा[११] भूयः शरवर्षाणि सन्ततम्। अग्निशिखामुखैस्तीक्ष्णैः क्षुरनेमिपतत्रिभिः ॥३४॥
विराजते स्म तद्[१२] व्योम चाऽन्धीभूतं तयोः शरैः। खद्योततारकैरभ्रैः शरत्कालक्षपेव च ॥३५॥
देवास्ततोऽसुरान् जघ्नुः पाशैः खड्गैश्च तोमरैः। शतघ्नीभिन्दिपालैश्च शक्तिभिर्मुशलैर्भृशम् ॥३६॥
ततो दैत्याः सुराञ्जघ्नुः खड्गैः परशुपट्टिशैः। पाशैः प्रासैश्च खट्वाङ्गैः परिघैर्मुद्गरैः शरैः ॥३७॥
ततश्चाभून्महायुद्धं तुमुलं लोमहर्षणम्। शस्त्रास्त्रक्षेपणैस्तीव्रं सैन्ययोश्च भयप्रदम् ॥३८॥
तत्र चाभून्महानादः सर्वलोकभयङ्करः। वाजिनां ह्रेषितैश्चैव हस्तिनां निःस्वनैस्तथा ॥३९॥
कांस्यानाञ्चैव वाद्यानां भेर्यब्जानां तथा पुनः। मृदङ्गानाञ्च ढक्कानां पटहानां तथैव च ॥४०॥
वीराणां सिंहनादानां नादा नेमिस्वनास्तथा[१२क]। मिथः शस्त्रास्त्रवर्षाणामाग्नेयास्त्रमहत्स्वनम् ॥४१॥
चन्द्रनाभो महादैत्यश्चाऽऽदाय कार्मुकं द्रुतम्। देवसैन्येऽभिदुद्राव प्रोद्दिश्य तान्पतत्त्रिभिः ॥४२॥
तद्बाणैरर्दिता देवा दुद्रुवुश्च दिशो दश। तदोजोऽसहमानास्ते भिन्नसेतुरिवार्णवः ॥४३॥
दृष्ट्वा सैन्यं तदा शक्रः पलायितं दिशो दश। सारथिञ्च समाश्वास्य व्याचष्ट वचनं द्रुतम् ॥४४॥

---

धर्मधारा र यशोधारा नदीको कल्याणमय त्यस सङ्गममा देवताहरूले स्नान गरे, जप गरे र वरको प्रार्थना गरे। त्यसपछि सम्पूर्ण शस्त्र–अस्त्रले सुसज्जित देवताहरूले कवच पहिरिए, सुनको रथमा बसे र सिंहनाद गर्दै रणभूमिमा जान भनी निक्लिए ॥२९–३०॥

अत्यन्त उत्साहका साथ लड्नका लागि आउन लागेको देवताको सेनालाई देखेर चन्द्रनाभ दैत्य रीसले मुर्मुरियो। त्यसपछि त्यसले सबै सेना र सूर्यनाभ तथा अरूलाई पनि बोलायो। विजयाभिलाषी ती दैत्यले देवताहरूसित निर्भीक भएर युद्ध गरे। देवताहरूले सुनको पङ्ख भएका आ–आफ्ना नामले अङ्कित बाणहरू राक्षसहरूमाथि बर्साए र शिलाहरू प्रहार गरे। फेरि राक्षसहरूले बारम्बार बाणको वर्षा गरे। मुखबाट आगाको ज्वाला निकाल्ने, छुराको धारजस्ता बाणहरूले देवताहरूमाथि प्रहार गरे। जुनकिरी र ताराहरूले खचिखचाउ भएको बादलरहित शरत्कालीन आकाशलाई मेघले अँध्यारो पारेजस्तै दुईथरी सेनाका बाणको वर्षाले आकाश अँध्यारो भयो। ।३१–३५॥

त्यसपछि देवताहरूले बन्दुक, तोप, शक्ति, मुसल, तोमर, तरवार र पाशले राक्षसहरूलाई खूबसित हिर्काए। दैत्यहरूले पाश, खट्वाङ्ग, तोप, मुङ्ग्रो, बाण, बन्चरो, तरबार आदि अस्त्रले देवताहरूलाई हाने। त्यसपछि दुई सेनाको बीचमा शस्त्र–अस्त्र फ्याँकाफ्याँक गरिएको रोमाञ्चकारी एवं दुबैतर्फका सैन्यका लागि डरलाग्दो ठूलो युद्ध भयो। त्यहाँ सम्पूर्ण प्राणीहरूमा त्रास पैदा गर्ने घोडाको हिनहिनाहट र हात्तीको शब्दले गर्दा ठूलो आवाज निस्कियो। यसैगरी झ्याली, मादल, दमाहा, ट्याम्को, ढोल, दयाङ्ग्रो र नर्सिङ्गा बाजाले गर्दा ठूलो कोलाहल आयो ॥३६–४०॥

वीरहरूको सिंहनाद, रथको पाङ्ग्राको आवाज, शस्त्र–अस्त्रको घर्षण र आग्नेयास्त्रको शब्दले गर्दा तुमुल ध्वनि पैदा भयो। चन्द्रनाभ नाम गरेको दैत्यले तुरुन्त धनुष ल्यायो र देवताहरूका सेनालाई ताकेर बाणहरू प्रहार गर्‍यो। त्यसको बाणले पीडित भएका देवताहरू त्यसको तेज सहन नसरी बाँध टुटेको समुद्रजस्तै भएर दशै दिशामा दौडिए। दशै दिशामा छिट्ये–छिट्ये भाग्न लागेका देवसेनालाई देखेर इन्द्रले सारथिलाई आश्वासन दिँदै भने ॥४१–४४॥

---

१०. तस्मिंश्च प्रार्थयन् वरान् इति न.सं.पु.पाठः।
११. ववर्षुर्दानवा इति न.सं.पु.पाठः।
१२. सं. विराजते तद इति न.सं.पु.पाठः।
१२क. रथनेमिस्वनं तथा इति न.सं.पु.पाठः।

शक्र उवाच

रे रे देवाः ! निवर्त्तध्वं मा वहत[१३] महद्भयम्। पलायने न सिद्धिर्नो भवामश्च[१४] विडम्बिताः ॥४५॥
पराक्रमेषु धिक्कारो यतो युद्धपराङ्मुखाः। भूत्वा लोकनमस्याश्च त्यक्त्वा युद्धं पलायिताः ॥४६॥
त्यक्त्वा युद्धं पलायन्ते[१५] नारकास्ते न संशयः। स्वान् स्वान् धर्मान् समादाय योद्धव्यं हि मया सह ॥४७॥

स्कन्द उवाच

शक्रस्य वचनं श्रुत्वा परुषमप्रियं तदा। समागताः[१६] सुरा योद्धुं चोदयन्तो[१७] रथान् द्रुतम् ॥४८॥
सम्भूय सर्वसैन्यैश्च देवाः शक्रपुरोगमाः। युयुधुश्च मुहुर्भूयो दानवैश्च समं भृशम् ॥४९॥
तत्र सम्मन्त्र्य देवाश्च चन्द्रनाभं महासुरम्। रुरुधुस्तञ्चतुर्दिक्षु शतकोटिरथैस्ततः ॥५०॥
ववृषुश्च[१८] शरासारान्युगपत्तं सुरा भृशम्। शस्त्रास्त्रैश्च पुनर्जघ्नुश्चिच्छिदुश्च तथा मुहुः ॥५१॥
सूर्यनाभो महाक्रोधी ददर्श भ्रातरं तदा। रणमध्ये स्थितं तीव्रदेवसैन्यैर्दृढार्दितम् ॥५२॥
त्वरितं सोऽभिदुद्राव क्रोधेन मूर्च्छितो भृशम्। संरक्षणाय च भ्रातुः शतकोटिरथैः सह ॥५३॥
ततश्चाऽभून् महायुद्धं सर्वलोकभयङ्करम्। शस्त्रास्त्रक्षेपणं तीव्रं सेनयोरुभयोस्तदा ॥५४॥
सैन्यानि दुद्रुवुर्भूयो[१९] देवानाञ्च घटोद्भव। चन्द्रनाभासुरं त्यक्त्वा तौ च सम्भूय संस्थितौ[२०] ॥५५॥
ददर्श चाऽसुरैर्विष्णुर्देवसैन्यं पराजितम्[२१]। आरुरोह गरुत्मन्तं गदाहस्तश्च साम्प्रतम् ॥५६॥
अभिदुद्राव विष्णुश्च दैत्यसैन्यं स सत्वरम्। शार्ङ्गं धनुः समादाय टङ्कारं कृतवान् मुहुः ॥५७॥
ववर्ष बाणराशिं[२२] स दैत्यसैन्योपरि द्रुतम्। अन्धीभूता दिशस्तत्र नभोवर्षैर्यथा क्षपाः ॥५८॥
बभञ्ज गदया विष्णुर्दानवानां रथान् बहून्। तेषां चिच्छेद[२३] चक्रेण कबन्धान् सूर्यवर्चसा ॥५९॥

---

इन्द्रले भने - हे देवता हो ! फर्क। बढी डर नमान। भागेर हाम्रो सिद्धि हुँदैन। हामी विडम्बित हुन्छौं। तिमीहरूको पराक्रमलाई धिक्कार छ, किनभने तिमीहरू युद्ध पराङ्मुख भयौ। सबै संसारका मान्य भएर पनि तिमीहरू युद्ध छोडेर भाग्यौ। युद्धबाट भाग्ने पुरुषहरू नरकमा गएर पर्छन्, यसमा शङ्का छैन। त्यसैले आ-आफ्नो धर्मअनुसार मेरो साथमा लागेर युद्ध गर ॥४५-४७॥

कार्तिक स्वामीले भन्नुभयो - इन्द्रको अप्रिय तथा कठोर वचन सुनेपछि देवताहरू लड्नका लागि तुरुन्त रथ मोडेर फर्किए। इन्द्र आदि गरिएका देवता र उनीहरूका सेनाले मिलेर फेरि दानवहरूसित युद्ध गरे। देवताहरूले सल्लाह गरेर चारै दिशाबाट सय करोड रथले चन्द्रनाभ नाम गरेको राक्षसलाई त्यहाँ थुने। एकैचोटि देवताहरूले खूबसित बाणहरूको वर्षा गरे। फेरि अस्त्र-शस्त्रले प्रहार गरे र बारम्बार बाणले तिनीहरूका शस्त्र एवं अस्त्रलाई काटे। अत्यन्त रिसाहा सूर्यनाभले तीव्र रूपमा देवताको सैन्यद्वारा पीडित भएको आफ्नो भाइलाई युद्धको बीचमा अवस्थित भएको देख्यो। त्यसपछि त्यो सय करोड रथ लिएर भाइको रक्षाका लागि रीसले मुर्मुरिँदै तुरुन्त दौडियो। त्यसबखत अस्त्रशस्त्रको खूबसित प्रहार भयो। दुई सेनाको बीचमा सबै प्राणीहरूलाई त्रास पैदा गराउने खालको डरलाग्दो युद्ध भयो ॥४८-५४॥

हे अगस्त्य मुनि ! अनि देवताका सेनाहरू चन्द्रनाभ राक्षसलाई त्यहीं छोडेर भागे। चन्द्रनाभ र सूर्यनाभ दुबै एकै ठाउँमा मिलेर बसे। भगवान् विष्णुले राक्षसहरूद्वारा धूलोपिठो पारिएका देवताको सेनालाई देख्नुभयो। त्यसपछि तुरुन्त गदा हातमा लिएर गरुडमा चढ्नुभयो। भगवान् विष्णु शार्ङ्ग धनु लिएर त्यसको आवाज छिट्टो-छिट्टो निकाल्दै दैत्यको सेनामाथि जाइलाग्नुभयो। उहाँले दैत्यको सेनामाथि छिट्टो-छिट्टो बाणवर्षा गर्नुभयो। आकाशबाट वर्षा हुँदा रात अँध्यारा भएझैं सबै दिशाहरू अँध्यारा भए। भगवान् विष्णुले दानवका धेरै रथहरूलाई भाँच्नुभयो। सूर्यजस्तो तेजिलो चक्रले ती मुर्कुट्टाहरूलाई काट्नुभयो ॥५५-५९॥

---

१३. बहध्वम् इति न.सं.पु.पाठः। १४. भवायुश्च इति न.सं.पु.पाठः। १५. पलायन्ति इति न.सं.पु.पाठः।
१६. निववर्त्तुः इति न.सं.पु.पाठः। १७ प्रचोदयन् इति न.सं.पु.पाठः। १८. ववर्षुः इति न.सं.पु.पाठः।
१९. भूयश्च दुद्रुवुः सैन्या इति न.सं.पु.पाठः। २०. सम्भूय चैकतः स्थितौ इति न.सं.पु.पाठः। २१. विदीर्णितम् इति न.सं.पु.पाठः।
२२. बाणवृष्टिम् इति न.सं.पु.पाठः। २३. तांश्च इति न.सं.पु.पाठः।

दृष्ट्वा त्रिपुरदैत्योऽसौ भ्रातृसैन्यं सुरार्दितम्[२४]। व्योम्नोऽसुरः समागत्य दुद्रावाऽऽशु रथैर्वृतः ॥६०॥
शतकोटिसहस्रैश्च रथैस्तैः[२५] परिवारितः। चक्रे युद्धं सुरैः सार्द्धं शस्त्रास्त्रक्षेपणैर्मिथः ॥६१॥
दैत्याञ्जघ्नुः सुरास्तत्र कोटिशः समरे स्थितान्[२६]। परिघैस्तोमरैः खड्गैः शरासारैर्मुहुर्मुहुः ॥६२॥
दृष्ट्वा तार्क्ष्यः स्वकं सैन्यञ्चाऽर्दितं दानवैर्भृशम्। प्रभोराज्ञां समादाय दैत्यसैन्ये ययौ रुषा ॥६३॥
त्रिपुरस्य रथं धृत्वा व्योमस्थं गरुडो बली[२७]। तद्रथेन रथान् दैत्यान् कोटिकोटि जघान च ॥६४॥
नखैर्विदारिताः केचिन्मुष्टिभिश्चैव ताडिताः। कर्तिताश्चञ्चुना[२८] केचित् पक्षपातैश्च कोटिशः ॥६५॥
ततो युद्धमभूत्तत्र तुमुलं लोमहर्षणम्। तत्रसुः सर्वलोकाश्च निशम्य[२९] भीतिदं रवम् ॥६६॥
महान् कोलाहलश्चाऽभूत्[३०] सैन्ययोर्मुखसम्भवम्। वाजिद्वीपिरथोद्भूतं हन्यतां गृह्यतामिति ॥६७॥
युगान्ते चैव भूतानां समुद्रस्य च[३१] पर्वणि। कल्पान्ते चैव मेघानां चाऽऽसीन्नादो यथा तथा ॥६८॥
ततस्त्रिपुरदैत्योऽसौ क्रोधेनाऽऽशु मुमूर्च्छ च। विदारितञ्च[३२] तार्क्ष्येण प्रेक्ष्य सैन्यं स्वकं तदा ॥६९॥
रथेनाऽऽशु समुत्प्लुत्य तस्थौ व्योम्नि ह्यलक्षितः[३३]। मायावी मायया तार्क्ष्ये वह्निवृष्टिं चकार ह[३४] ॥७०॥
भूयश्चकार[३५] मायावी देवसैन्येषु सन्ततम्। सर्वशस्त्रास्त्रवर्षाञ्च सर्वतः प्रलये यथा[३६] ॥७१॥
पांसुवृक्षशिलासर्पजलचक्राणि सोऽसुरः। मायावी मायया देवसैनिकेषु ववर्ष ह[३७] ॥७२॥
ततश्च सुरसैन्यानि नानाशस्त्रास्त्रवर्षणैः। अर्दितानि परित्यज्य[३८] युद्धं दिशश्च भेजिरे ॥७३॥

---

अत्यन्त पीडित भएको भाइको सेनालाई देखेर त्रिपुरासुर दैत्य रथ चढेर आकाश (स्वर्ग) बाट तुरुन्त आयो र देवताहरूमाथि जाइलाग्यो। सय करोड हजार रथले युक्त भएका तिनीहरूले परस्परमा शस्त्रअस्त्रको आपसमा प्रहार गरेर देवताका साथ युद्ध गरे। देवताहरूले नमरेका करोडौं करोड दैत्यहरूलाई तोप, घुयेंत्रो, खड्ग, तरबार र बाणको वर्षा गरेर बारम्बार प्रहार गरे। आफ्नो सेनालाई दानवहरूले खूबसित पीडा दिएको देखेर गरुड भगवान् विष्णुको आज्ञा लिएर दैत्यको सेनामाथि झम्टिए। बलवान् गरुडले आकाशमा रहेको त्यो रथलाई हातमा लिएर त्यसै रथले रथारोही दैत्यहरूलाई करोडौं पटक प्रहार गरे। कसैलाई नङ्ग्राले चिथोरे, कसैलाई मुठ्ठीले हिर्काए, कसैलाई चुच्चाले ठुँगे र करोडौंलाई पँखेटाले हिर्काए। त्यसपछि त्यहाँ रोमाञ्चकारी ठूलो युद्ध भयो। भयानक शब्द सुनेर सबै प्राणीहरू डराए ॥६०-६६॥

घोडा, हात्ती र रथ सेनाबाट आएको मार, समातजस्ता आवाजले सैन्यको अगाडि ठूलो कोलाहल भयो। युगको अन्त्यमा प्राणीहरूको जस्तो आवाज आउँछ, पर्वमा समुद्रमा जस्तो आवाज आउँछ, कल्पको अन्त्यमा मेघको जस्तो आवाज आउँछ, त्यस्तै आवाज आयो। त्यसपछि गरुडले आफ्ना सेनालाई छियाछिया पारेको देखेर त्रिपुर नाम गरेको दैत्य अत्यन्त क्रुद्ध भयो। रथबाट तुरुन्त उफ्रिएर आकाशबाट नदेखिने गरी मायाद्वारा मायावी रूप लिएर त्यसले गरुडमाथि अग्निवर्षा गर्‍यो। फेरि मायावी त्यस दानवले देवताहरूको सेनामाथि सहनै नसकिने शस्त्र र अस्त्रको निरन्तर वर्षा गर्‍यो। देवताहरूको सेनामाथि उसले ढुङ्गा वर्सायो, रुख बर्सायो, धूलो बर्सायो, सर्प बर्सायो र चक्रहरूको वर्षा गर्‍यो। विभिन्न किसिमका शस्त्रअस्त्रको वर्षाले गर्दा देवताका सेनाहरू पीडित भएर युद्ध छोडी विभिन्न दिशातिर लागे ॥६७-७३॥

---

२४. दृढार्दितम् इति न.सं.पु.पाठः।
२५. सरथैः इति न.सं.पु.पाठः।
२६. कोटिकोट्यमरानपि इति न.सं.पु.पाठः।
२७. तद्रथं गृह्य हरस्तेन व्योमस्थं सहसा बली इति न.सं.पु.पाठः।
२८. दीर्णिताश्चञ्चुना इति न.सं.पु.पाठः।
२९. आकर्ण्य इति न.सं.पु.पाठः।
३०. महत्कोलाहलं चाभूत् इति न.सं.पु.पाठः।
३१. समुद्रे चैव इति न.सं.पु.पाठः।
३२. विदीर्णितञ्च इति न.सं.पु.पाठः।
३३. ह्यलक्षयन् इति न.सं.पु.पाठः।
३४. अग्निवृष्टिं ववर्ष च इति न.सं.पु.पाठः।
३५. सुरसैन्ये सुदुःसहम् इति न.सं.पु.पाठः।
३६. ववर्ष इति न.सं.पु.पाठः।
३७. अश्मवर्षं तथा वृक्षान्पांशुवर्षं जलं पुनः।
३८. च संत्यज्य इति न.सं.पु.पाठः। सर्प्पवर्षं च चक्राणि सुरसैन्ये ववर्ष च इति न.सं.पु.पाठः।

ततः सैन्यानि[३९] देवानां सम्भूय सहसा पुनः। हन्यमानानि शस्त्रास्त्रैः शङ्करं शरणं ययुः ॥७४॥
ततश्च शङ्करो देवः प्रेक्ष्याऽमरचमू तदा। आश्वासयच्च तान् देवान् त्रासतप्तान्[४०] व्रणाङ्कितान् ॥७५॥
जाम्बूनदमयेनाऽऽजौ रथेन दैत्यवाहिनीम्[४१]। शूलमुद्यम्य भूतेशोऽभिदुद्राव गणैः सह[४२] ॥७६॥
चिक्षेपाऽसुरसैन्येषु ह्यस्त्रं पाशुपतं महत्[४३]। दग्धं सैन्यं स्वकं प्रेक्ष्य रथेनोत्पत्य शङ्करम्[४४] ॥७७॥
व्योमस्थस्त्रिपुरो दैत्यो बहुमायाविशारदः। रुद्रोपरि महासारं कृतवान्[४५] जलवर्षणम् ॥७८॥
ततो रुद्रो जगत्पातुं हन्तुमियेष तांस्तदा। विष्णुञ्चाऽग्निं समाहूयाऽमन्त्रयद् रणकौशलम्[४६] ७९॥

रुद्र उवाच

भो भो विष्णो ! महाबाहो ! शक्तोऽसि त्वं धनुर्भव। मम बाणञ्च संवोढुमन्यः कोपि न शक्तवान् ॥८०॥
भो भो वह्ने ! महातेजाः ! सर्वशत्रुप्रभक्षक। वोढुं मदोजः संशक्तस्त्रितनुनाशको भव ॥८१॥
शेषः सर्वारिसङ्ग्रास[४७] वोढुं शक्तो मदोजसम्। योत्स्यामि साम्प्रतं दैत्यैः[४८] कार्मुकस्य गुणो भव ॥८२॥

स्कन्द उवाच

एवं सम्मन्त्र्य देवेशो विष्णुना चाऽग्निना पुनः। शेषेण च समं धीमन् ! ददौ तेभ्यो वरान् विभुः ॥८३॥
विष्णुकायं धनुश्चक्रे गुणं शेषकलेवरम्। आनम्य तद्धनू रुद्रस्तताना़ऽहितनुं गुणम् ॥८४॥
वामहस्तेन तद् धृत्वा टङ्कारं कृतवान् विभुः। सन्दधे त्रिशिखं वह्निं ज्यायां तेजोमयं खरम् ॥८५॥
ततष्टङ्कारशब्देन भुवनानि चतुर्दश। चुक्षुभिरे तदा धीमन् भयभीताः सुरारयः ॥८६॥
सगर्भदैत्यपत्नीनां पेतुर्गर्भाश्च तद् धृताः[४९]। मासैः पूर्णास्त्वपूर्णाश्च युवतीनामपि ध्रुवम्[५०] ॥८७॥

---

शस्त्रअस्त्रले पीडित भएका देवताका सेनाहरू तुरुन्त जम्मा भएर भगवान् शङ्करको शरणमा गए। त्यसपछि शङ्कर भगवान्ले डराएका र घाइते देवताका सेनालाई देखेर उनीहरूलाई आश्वासन दिनुभयो। युद्धमा सुवर्णमय त्रिशूल उज्याउँदै गणहरूलाई साथमा लिएर भगवान् शङ्कर राक्षसहरूको सेना भएतिर दौडनुभयो। आफ्नो सेना दग्ध भएको देखेर भगवान् शङ्करले रथबाट उफ्रिएर दैत्यसेनामाथि पाशुपतास्त्र प्रहार गर्नुभयो। आकाशमा बसेर अतिशय माया रच्न सिपालु त्रिपुर नाम गरेको दैत्यले भगवान् शङ्करमाथि मुसलधारे पानीको वर्षा गर्‍यो। त्यसपछि संसारलाई रक्षा गर्नका लागि भगवान् शङ्करले त्यसबखत तिनीहरूलाई मार्ने इच्छा गर्नुभयो र विष्णु तथा अग्निलाई बोलाएर सरसल्लाह गर्नुभयो ॥७४-७९॥

रुद्रले भन्नुभयो – हे विष्णु ! हे महाबाहु ! तिमी समर्थ छौ, मेरो धनु बन। मेरो धनुलाई बोक्न अरू कसैले पनि सक्दैन। सम्पूर्ण शत्रुलाई खाने तेजस्वी हे अग्नि ! मेरो तेजलाई बोक्न तिमी समर्थ छौ, तिनै शहरका नाशक बन। हे शेषनाग ! सम्पूर्ण शत्रुलाई समाप्त पार्ने मेरो तेजलाई बोक्न तिमी समर्थ छौ, अब म युद्ध गर्नेछु, मेरो धनुषको ताँदो बन ॥८०-८२॥

कार्तिक स्वामीले भन्नुभयो – यसरी विष्णु, अग्नि र शेषनागसित सरसल्लाह गरेर भगवान् शङ्करले तिनीहरूलाई वर दिनुभयो। भगवान् शङ्करले धनुषको शरीर विष्णुलाई बनाउनुभयो, ताँदो शेषको शरीर बन्यो। सर्पको शरीर भएको त्यस धनुमा ताँदो चढाई भगवान् शङ्करले बाण प्रक्षेपण गर्नुभयो। बायाँ हातले धनुषलाई समातेर भगवान् शङ्करले टङ्कार गर्नुभयो र तीन ज्वाला भएको तेजोमय कडा आगोलाई उहाँले धनुषमा जोड्नुभयो। त्यसपछि धनुष्टङ्कारको शब्दले चौधै भुवन हल्लियो, राक्षसहरू भयभीत भए। गर्भवती भएका दैत्यका सबै पत्नीहरूले गर्भपात गरे। महिना पुगेका वा नपुगेका युवतीहरूको पनि गर्भपतन भयो ॥८३-८७॥

---

३९. सैन्याश्च इति न.सं.पु.पाठः।
४०. त्रस्तमानान् इति न.सं.पु.पाठः।
४१. जाम्बूनदमयेनाजौ तद्वाहिन्याञ्च सत्वरम् इति न.सं.पु.पाठः।
४२. समम् इति न.सं.पु.पाठः।
४३. चोत्पपात रथेन च इति न.सं.पु.पाठः।
४४. प्रेक्ष्य पाशुपतास्त्रेण दग्धं सैन्यं स्वकं भृशम् इति न.सं.पु.पाठः।
४५. ववर्ष इति न.सं.पु.पाठः।
४६. यद्धि तथात्र च इति न.सं.पु.पाठः।
४७. शेषसर्वारिसंग्रस्तम् इति न.सं.पु.पाठः।
४८. इदानीं योधयिष्येऽहम् इति न.सं.पु.पाठः।
४९. पेतुर्गर्भाश्च सर्वशः इति न.सं.पु.पाठः।
५०. युवतीनामपि ध्रुवम् इति न.सं.पु.पाठः।

ज्यानिःस्वनं समाकर्ण्य लोका भीता महाद्भुतम्[५१]। भूचरा जलगाश्चैव खेचरास्त्रिविधास्तथा[५२] ॥८८॥
देवदानवगन्धर्वा यक्षरक्षोप्सरोगणाः। ससैन्याश्चाऽसुरा भीतास्तद्धनुर्ज्यास्वनैर्मुहुः ॥८९॥
त्रिदिवेषु च सर्वेषु पातालेषु किमद्भुतम्। सर्वलोका मिथः प्रोचुर्महाचिन्ताकुला इति ॥९०॥
पेतुर्गर्भाश्च नारीणां खभूमिजलवासिनाम्। धनुष्टङ्कारसम्भूतं चाऽऽकर्ण्य निनदं भृशम् ॥९१॥
उद्दध्रे कुपितो रुद्र आकर्णं भीषकं शरम्[५३]। ज्यायां निधाय दीप्तास्यं त्रिशिखं तैजसं खरम् ॥९२॥
बभौ रुद्रस्तदा गाढं कल्पान्तेऽग्निर्यथा स्वयम्। ग्रसन्निव हि त्रैलोक्यं वाडवोऽग्निर्यथाऽर्णवे[५४] ॥९३॥
देवासुरा वियत्स्थाश्च ददृशुस्तं महाद्भुतम्। सर्वतेजोमयं देहं क्रोधानलसुसंवृतम् ॥९४॥
सबाणचापहस्तं च ज्वलन्तञ्च[५५] रथस्थितम्। भासयन्तं दिशो भाभिः कर्णान्तबाणधारिणम्[५६] ॥९५॥
तं प्रेक्ष्य मुनयो जेपुः सिद्धाश्च तुष्टुवुर्मुहुः। जयकारञ्च[५७] गन्धर्वाश्चक्रुस्ते भयविह्वलाः ॥९६॥
दृष्ट्वा तद् दानवा भूयस्त्रस्ताः कम्पितकायकाः[५८]। खक्षितिशैलराज्येषु विविशुस्ते स्वके स्वके ॥९७॥
तं प्रेक्ष्य त्रिपुरो दैत्यो ज्वलन्निव[५९] रुषाऽग्निना। व्योमस्थोऽपि भयत्रस्तो विवेश स्वस्थिते पुरे ॥९८॥
रुद्रोऽपि तान् समुद्दिश्य त्रिपुरञ्च त्रिषु स्थितम्। उद्धृत्योन्मुच्य तूर्णं वै चिक्षेप त्रीन् शरान् रुषा[६०] ॥९९॥
पुरेषु त्रिषु बाणास्ते पेतुरुल्का इव द्रुतम्। ददहुस्त्रीणि राज्यानि क्षयकाले यथा जगत् ॥१००॥
पुरत्रयञ्च जज्वाल साट्टप्राकारगोपुरम्। ज्वालाभिश्च बभौ तद्धि युगान्ते पावका इव[६१] ॥१०१॥

---

पृथ्वीमा हिँड्ने, जलमा बस्ने र आकाशमा उड्ने तीनै किसिमका प्राणीहरू धनुषको अत्यन्त आश्चर्यजनक आवाज सुनेर डराए। देवता, दानव, गन्धर्व, यक्ष ससैन्य राक्षसहरू त्यो धनुषको टङ्कारले डराए। तीनै लोक (भूर्लोक, भुवर्लोक र स्वर्लोक) मा र सबै पाताल (तल, वितल आदि) मा रहेका प्राणीहरू के आश्चर्यजनक घटना हुनलाग्यो भनेर अत्यन्त चिन्तित हुँदै आपसमा कुराकानी गर्न थाले। धनुष्टङ्कारबाट उत्पन्न भएको कडा शब्द सुनेर आकाश, भूमि र पानीमा बस्ने स्त्रीहरूको गर्भपतन भयो। क्रुद्ध हुनुभएका भगवान् शङ्करले अत्यन्त डरलाग्दो, मुखमा धपधप बल्ने, तेजिलो, तीन शिखा भएको बाणलाई ताँदोमा चढाएर कानसम्म पुग्ने गरी खैँचिनुभयो। त्यतिखेर भगवान् रुद्र तीनै लोकलाई भस्म गर्न लागेको कल्पान्तको आगोजस्तै अथवा समुद्रमा देखिने बडवानलजस्तै आफैँ अतिशय जाज्वल्यमान हुनुभयो ॥८८-९३॥

आकाशमा बस्ने देवता र राक्षसहरूले पनि अत्यन्त आश्चर्यजनक, क्रोधरूपी आगोबाट पैदा भएको तेजस्वी शरीरलाई देखे। कानसम्म बाण खिँचेर बलिरहेको धनुष हातमा लिई रथमा बस्नुभएकमा दशै दिशा उज्यालो पार्नुहुने शङ्करलाई सबैले देखे। उहाँलाई देखेर ऋषिहरूले मन्त्र जपे, सिद्धहरूले बारम्बार स्तुति गरे, गन्धर्वहरूले भयले विह्वल भएर जय-जयकार शब्द गरे। उता दानवहरू त्यो देखेर शरीर कँपाउन थाले। आकाश, पृथ्वी, पर्वत र आ-आफ्नो राज्यमा उनीहरू प्रवेश गरे। त्यो देखेर त्रिपुर दैत्य रीसको आगोले जल्यो। आकाशमा भए तापनि भयभीत भएर आफ्नै शहरभित्र पस्यो। भगवान् शङ्करले पनि तीनतिर रहेको त्रिपुर शहरलाई लक्ष्य गरेर तीनवटा बाण तुरुन्त हान्नुभयो। ती बाणहरू तीनै पुरमा उल्काजस्तै गरेर तुरुन्त खसे। तिनीहरूले प्रलयकालमा संसारलाई जस्तै गरी तीनवटै राज्यलाई डढाए। त्यहाँका घर, दरबार, शहरका ढोका सबै जले। युगको अन्त्यमा लागेको आगोजस्तै त्यहाँका शहर अग्निद्वाराशोभायमान देखिए ॥९४-१०१॥

---

५१. त्रेसुर्लोका महाद्भुतैः इति न.सं.पु.पाठः।
५२. स्मृताः इति न.सं.पु.पाठः।
५३. रौद्रमन्युर्यतो रुद्रश्चाकर्ण्यमुद्धृत शरम् इति न.सं.पु.पाठः।
५४. यथा दावानलोऽर्णवे इति न.सं.पु.पाठः।
५५. सशरञ्च धनुर्हस्तं ज्वलमानम् इति न.सं.पु.पाठः।
५६. भाभिराकर्णं बाणमुद्धृतम् इति न.सं.पु.पाठः।
५७. जय जयेति इति न.सं.पु.पाठः।
५८. प्रकम्पदेहिनः इति न.सं.पु.पाठः।
५९. ज्वलमानः इति न.सं.पु.पाठः।
६०. त्रिशराणि वै इति न.सं.पु.पाठः।
६१. जज्वलुर्नगरास्ते च साट्टप्राकारगोपुराः।
बभुस्तन्नगरास्त्रिस्था युगान्ते चैव पावकाः इति न.सं.पु.पाठः।

भस्मीभूताश्च तद्देशाः सस्त्रीबालकवृद्धकाः[६२]। त्रयो देशाः सदैत्याश्च कल्पे दावो यथा जगत् ॥१०२॥
आसीद् व्योम्नि महानादो दुन्दुभीनां हतेऽसुरे। जय जयेति सिद्धानां मुनीनां स्तुतिसम्भवः[६३] ॥१०३॥
ववर्ष पुष्पराशिश्च[६४] लाजासारस्तथैव च। साधुसाधु जयेत्यार्य सर्वत्राभूत्पुनः स्वनः[६५] ॥१०४॥
नमः शिवाय रुद्राय जगत्प्ररक्षिणे नमः। इति स्तुतिस्तता[६६] व्योम्नि स्वर्गे क्षितौ हि दिक्षु च ॥१०५॥
उपागत्य ततस्तस्य गणाः सिद्धाः सुरर्षयः। प्रणेमुः सततं रुद्रं पतिताश्चरणद्वये[६७] ॥१०६॥
तुष्टुवुश्च परिक्रम्य हर्षगद्गदभाषणैः। अपूपुजन्सुरा रुद्रं बहुमानपुरःसरम् ॥१०७॥

देवा ऊचुः

नमो रुद्राय देवाय जगतां पतये नमः। रक्षकाय च लोकानाञ्जगदार्त्तिविनाशिने ॥१०८॥
नमो रुद्राय रौद्राय नमस्ते रुद्रमन्यवे। क्रोधं संहर देवेश चास्मान् रक्ष पुनर्विभो ॥१०९॥
यज्ञदत्तं हविः पूतं भुञ्ज्मः सर्वे[६८] सुखं वयम्। स्वर्गे चाद्यैव तिष्ठामस्त्वत्प्रसादान्महेश्वर ॥११०॥
तव तेजसि दीप्ते च[६९] जगत्स्थावरजङ्गमाः। चिरं सुखं प्रतिष्ठन्ति चाद्यादि विगतज्वराः ॥१११॥
हतेषु तेषु पापेषु त्रिपुरे दानवेषु च। सुखं सर्वत्र स्थास्यामः स्थावरैर्जङ्गमैः समम् ॥११२॥

रुद्र उवाच

गच्छत[७०] त्रिदशा यूयमरिभीतिगतज्वराः। तिष्ठत च[७१] मुदा युक्ताः स्वस्वस्थाने गणैः समम् ॥११३॥
अर्दिता यैर्भृशं यूयं स्वर्गञ्चैव प्रलुण्ठितम्। तद्भयमद्यतो नास्ति भो गच्छत[७२] यथासुखम् ॥११४॥

---

बालक, वृद्ध, स्त्रीजातिहरूसहित त्यो देश सबै खरानी भयो। कल्पको अन्त्यमा अग्निले संसारलाई खरानी गराएजस्तै दैत्यले सहित तीन शहर सखाप भए। राक्षसहरू मरेपछि आकाशमा नगराको ठूलो बाजा बज्यो। सिद्ध र मुनिको स्तुतिबाट पैदा भएको जय–जयकार घन्कियो। पुष्पवृष्टि भयो, लाजाहरू बर्सिए, फेरि जतातत‍ै साधु साधु, जय होस्, जय होस् जस्ता शब्दहरू गुञ्जिए। शिवजीलाई नमस्कार छ, संसारको रक्षा गर्ने रुद्रलाई नमस्कार छ, यस्ता स्तुतिवचन शब्द आकाश, स्वर्ग, पृथ्वी र दिशामा पनि व्याप्त भए। सिद्ध र देवर्षिहरू नजिकै आएर भगवान् शङ्करको चरणमा परेर बारम्बार नमस्कार गर्न थाले। देवताहरूले परिक्रमा गरेर हर्षले गद्गद भएको वाणीले शिवजीको स्तुति गरे। अत्यन्त सम्मानका साथ (उहाँको) पूजा भयो ॥१०२–१०७॥

देवताहरूले भने – रुद्रदेवलाई नमस्कार छ र संसारका स्वामीलाई नमस्कार छ। संसारबाट पीडा हटाइदिने जगत्का रक्षकलाई नमस्कार छ। रुद्रलाई नमस्कार छ र डरलाग्दो क्रोध भएका रौद्रलाई नमस्कार छ। रुद्रको भयङ्कर क्रोधलाई नमस्कार छ। हे देवेश ! हे विभो ! क्रोध छोड्नुहोस्, हामीहरूको फेरि रक्षा गर्नुहोस्। यज्ञमा दिएका पवित्र हवनीय पदार्थलाई हामी आनन्दसित भोग गर्छौं। हे महेश्वर ! हजुरको कृपाले आजै हामी स्वर्ग जान्छौं। हजुरले गर्दा नै सम्पूर्ण स्थावर, जङ्गम आजदेखि तापबाट मुक्त भएर आनन्दसित बस्नेछन्। पापी ती दानव मरेको र त्रिपुर समाप्त भएको हुँदा स्थावर र जङ्गम सबै आनन्दसित बस्छौं ॥१०८–११२॥

रुद्रले भन्नुभयो – हे देवता हो ! नडराईकन तिमीहरू जाओ र आ–आफ्ना गणहरूका साथ आफ्ना ठाउँमा गएर बस। जसले तिमीहरूलाई पीडा दियो र स्वर्ग लुट्यो, त्यसको भय आजदेखि छैन। आनन्दसित जाओ ॥११३–११४॥

---

६२. बालवृद्धाः सयोषितः इति न.सं.पु.पाठः।
६३. स्तुतिसंभवम् इति न.सं.पु.पाठः।
६४. ववर्षुः पुष्पवृष्टीश्च इति न.सं.पु.पाठः।
६५. स्वनम् इति न.सं.पु.पाठः।
६६. इति शब्दमभूत् इति न.सं.पु.पाठः।
६७. मुहुस्खलत्तदङ्घ्रयोः इति न.सं.पु.पाठः।
६८. यज्ञदत्तान् हविःपूतान् भुञ्जामः इति न.सं.पु.पाठः।
६९. त्वत्कृते च महातेजो इति न.सं.पु.पाठः।
७०. गच्छध्वम् इति न.सं.पु.पाठः।
७१. तिष्ठन्ताम् इति न.सं.पु.पाठः।
७२. गच्छध्वम् इति न.सं.पु.पाठः।

स्कन्द उवाच

एवमाज्ञाप्य तान् देवान् त्वन्तर्धानं ययौ हरः। देवाश्च प्रययुः स्वर्गं हर्षपूरितमानसाः ॥११५॥
ऋषयोऽपि ययुर्धीर ! स्वं स्वं स्थानं हिमालये। किन्नरा यक्षगन्धर्वाः शत्रुनाशात्[७३] प्रहर्षिताः ॥११६॥
ययुर्दैत्याश्च पातालं परिवारैः समं तदा। रुद्रशराग्निभस्माङ्गा यशोधारातपोबलात् ॥११७॥
यशोपगायाः कथिता प्रशंसा मया, त्वया चाऽद्य श्रुता रसेन[७४]।
विद्राव्य देवाः सुवराश्च दैत्यान्चक्रुर्हि राज्यं त्रिदिवे सुखन्ते ॥११८॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे यशोधारामाहात्म्ये त्रिपुरासुरदाहो नामोनपञ्चाशत्तमोऽध्यायः ॥४९॥

---

कार्तिक स्वामीले भन्नुभयो – यसरी देवताहरूलाई यस्तो आदेश दिएर भगवान् शङ्कर अन्तर्धान हुनुभयो। अत्यन्त हर्षित भएर देवताहरू पनि स्वर्ग गए। शत्रुहरूको नाश भएपछि ऋषि, किन्नर, यक्ष, गन्धर्व प्रसन्न हुँदै हिमालयमा रहेका आ–आफ्नो स्थानमा गए। यशोधारामा गरेको तपस्याको कारणले गर्दा रुद्रको अग्निबाट शरीर डढेका ती दैत्यहरू परिवारैसहित पाताल गए। देवताहरूले वर प्राप्त गरेर दैत्यहरूलाई लघारी स्वर्गमा आनन्दसित सुखभोग गरेको कथाले युक्त भएको यशोधाराको माहात्म्य मैले तपाईंलाई बताएँ, तपाईंले पनि बड्ा आनन्दपूर्वक सुन्नुभयो ॥११५-११८॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डको यशोधारामाहात्म्य र त्रिपुरासुरदाहनामक उनन्पचासौं अध्याय पूर्ण भयो।

---

७३. शत्रुनाशे इति न.सं.पु.पाठः।

७४. मया च तुभ्यं ह्यधुना प्रलब्धा इति न.सं.पु.पाठः।

# पञ्चाशत्तमोऽध्यायः

## विश्वधारामहिमा हिरण्यकशिपुवधश्च

स्कन्द उवाच

भूयश्च विश्वधाराया माहात्म्यं महदद्भुतम्। तच्छृणुत[1] प्रवक्ष्यामि पूर्ववृत्तञ्च तद्यथा[2] ॥१॥
हिरण्यकशिपुर्लब्ध्वा विश्वधारातटे वरम्। विद्राव्य विबुधान् राज्यं त्रैलोक्ये हि चकार सः ॥२॥
नरसिंहवपुर्धृत्वा ततो विष्णुर्महामनाः। तं जघान भृशं भूमौ नखैर्विदार्य वक्षसि[3] ॥३॥

अगस्त्य उवाच

हिरण्यकशिपुः स्कन्द ! कस्माद्वरं प्रलब्धवान्। कस्मिन्स्थाने तपश्चक्रे कतिवर्षं महासुरः ॥४॥
कीदृशं नारसिंहस्य वपुर्विष्णोः समर्हणम्। श्रोतुमिच्छामि तत्सर्वमुच्यतां मे हरात्मज ॥५॥

स्कन्द उवाच

हिमवद्दक्षिणे शृङ्गे मणिसानुनि प्रोज्ज्वले[4]। विश्वधाराप्रपाते हि सस्नौ तस्यां प्रतप्तवान् ॥६॥
तपश्चकार दैत्येशः सहस्राब्दं भृशं मुदा। निराहारोऽनिलाहारो भूत्वा मौनी जलासनः ॥७॥
आरराध विधिं भक्त्या जपैः स्तोत्रैः समर्हणैः। आविर्भूतो विधिस्तत्र वरदानाय चाऽवदत् ॥८॥

ब्रह्मोवाच

वरं वरय वत्स ! त्वं यत्ते मनसि वर्तते[5]। दास्याम्यहं हि तत्तुभ्यं मयि भक्त्या प्रतोषितः[6] ॥९॥
तुष्टोऽहं तव भक्त्या च तपोभिर्महदद्भुतैः। सहस्राब्दं तपस्थस्य लोकानां तु सुदुश्चरैः ॥१०॥

---

## अध्याय - ५०

### विश्वधारामहिमा र हिरण्यकशिपुको वध

हे मुनिवर ! अब म विश्वधाराको आश्चर्यजनक माहात्म्यअन्तर्गत पहिले जे भएको थियो त्यो बताउँछु, सुन्नुहोस्। हिरण्यकशिपुले विश्वधाराको तीरमा तपस्या गरेर वर प्राप्त गरी देवताहरूलाई लघारेर स्वर्गमा राज्य गऱ्यो। त्यसपछि महामना विष्णुले पृथ्वीमा नरसिंहको अवतार लिई नङ्ले छाती चिरेर त्यसलाई मार्नुभयो ॥१-३॥

अगस्त्य मुनिले भन्नुभयो - हे कार्तिक स्वामी ! हिरण्यकशिपुले कुन ठाउँमा, कति वर्ष तपस्या गऱ्यो र कसबाट वर पायो ? हे शिवपुत्र कार्तिक स्वामी ! भगवान् नृसिंहको कस्तो पूजनीय शरीर थियो ? त्यो सबै म सुन्न चाहन्छु, बताउनुहोस् ॥४-५॥

कार्तिक स्वामीले भन्नुभयो - हिरण्यकशिपुले हिमालयभन्दा दक्षिणतिर रहेको अत्यन्त उज्यालो मणिको शिखर भएको पर्वतमा अवस्थित विश्वधारा नदीमा स्नान गऱ्यो र त्यसै नदीको तटमा तपस्या गऱ्यो। त्यो दैत्यले कहिले पानी खाएर, कहिले भोकै बसेर, कहिले चुप्प लागी, कहिले पानीमाथि बसेर हजार वर्षसम्म प्रसन्न हुँदै खूबसित तपस्या गऱ्यो। उसले जप, स्तोत्र र पूजाद्वारा भक्तिपूर्वक ब्रह्माजीको आराधना गऱ्यो। त्यस ठाउँमा वर दिनका लागि ब्रह्माजी प्रकट हुनुभयो र वर दिन लाग्नुभयो ॥६-८॥

ब्रह्माले भन्नुभयो - हे बाबु ! तिम्रो मनमा जे इच्छा लागेको छ, त्यो वर माग। भक्तिबाट तिमीले मलाई प्रसन्न तुल्यायौ, त्यो वर म तिमीलाई दिनेछु। सामान्य मानिसले गर्न नसक्ने, हजार वर्षसम्मको आश्चर्यजनक तपस्यामा संलग्न तिम्रो भक्तिबाट म प्रसन्न भएँ ॥९-१०॥

---

१. तच्छृणुध्वम् इति न.सं.पु.पाठः। २. चाभूच्चैव यथा पुरा इति न.सं.पु.पाठः। ३. वक्षसम् इति न.सं.पु.पाठः।
४. मणिसानौ महोज्ज्वले इति न.सं.पु.पाठः। ५. वाञ्छितम् इति न.सं.पु.पाठः। ६. भक्तिप्रतोषिते इति न.सं.पु.पाठः।

हिरण्यकशिपुरुवाच

नमो ब्रह्माण्डनिर्मात्रे ब्रह्मदेवाय ब्रह्मणे[७] । विश्वरूपाय बीजाय विश्वसृजे नमो नमः ॥११॥
आत्मोद्भवाय लोकेश प्रजापते नमोऽस्तु ते । पितामहाय सर्वेषां धातर्वेधश्च ते नमः ॥१२॥
यदि तुष्टोऽसि देवेश मयि[८] भक्तिपरायणे । इदानीं त्वामहं याचे[९] सर्वनितान् वरान् विभो ॥१३॥
देवासुरैरवध्योऽहं गन्धर्वैर्यक्षकिन्नरैः । मानुषैः पशुभिश्चैव जलजैः कीटपक्षिभिः ॥१४॥
न शस्त्रास्त्रैर्न लोहैश्च न लोष्ठैर्नोपलैस्तथा । नेष्टकाभिर्न मृत्स्नाभिर्नास्थिभिर्न च दारुभिः ॥१५॥
न चाऽऽर्द्रैश्च न शुष्कैश्च न मन्त्रैर्न च भेषजैः । न रोगैर्न जडैर्मृत्युर्भविष्यतु कदापि मे ॥१६॥
जले स्थलेष्वासनेषु चाऽऽकाशेषु च सद्मसु । ग्रावमृत्तृणवृक्षेषु न मे मृत्युर्भविष्यतु ॥१७॥
न रात्रौ न दिने चैव न शयने न संस्थिते । न भोजने च नाऽकाले न सुरते तथैव च ॥१८॥
एतान्वरानहं याचे त्वां वै सर्वपितामह । त्वद्भक्ताय च दीनाय दीयतां मेऽद्य सर्वद ॥१९॥

स्कन्द उवाच

ओमिति च प्रतिश्रुत्य तिरोधानं ययौ विधिः । हिमवच्छिखरे तस्मै दत्त्वा वरान् तदीप्सितान् ॥२०॥
हिरण्यकशिपुश्चैव लब्धवरः प्रजापतेः । विश्वधाराजले स्नात्वा स्वर्गं दैत्यैः समं ययौ ॥२१॥
चकार तत्र युद्धं स द्वादशाब्दं सुरैः समम् । ततो निर्जितवान् देवान् दिवस्पतिपुरोगमान् ॥२२॥
विद्राव्य सकलान् देवान् ददर्श नन्दनं पुरम् । सर्वरत्नमयं गेहं स्वर्णप्राकारतोरणम् ॥२३॥

---

हिरण्यकशिपुले भन्यो– ब्रह्माण्डका सृष्टिकर्ता हे ब्रह्मदेव ! हजुरलाई नमस्कार छ। विश्वका स्रष्टा, बीज तथा विश्वरूप लिने हजुरलाई बारम्बार नमस्कार छ। आफैँ उत्पन्न हुनुभएका संसारका स्वामी हे प्रजापति ! हजुरलाई नमस्कार छ। हे ब्रह्मा ! हे वेधा ! सम्पूर्ण प्राणीका पितामह हुनुभएका हजुरलाई बारम्बार नमस्कार छ। हे विभो ! भक्तिमा संलग्न ममाथि हजुर यदि प्रसन्न हुनुहुन्छ भने हजुरसित म यी वरहरू माग्छु– मलाई देवता, राक्षस, गन्धर्व, यक्ष, किन्नर, मानिस, पशु, जलचर, कीरा र पक्षीहरूले मार्न नसकून्। शस्त्रले नमरूँ, अस्त्रले नमरूँ, फलामको ढिक्काले नमरूँ, ढेलाले नमरूँ, ईंटले नमरूँ, ढुङ्गाले नमरूँ, माटोले नमरूँ, हाडले नमरूँ र दाउराबाट पनि नमरूँ। चिसो, सुकेका वस्तु, मन्त्र, औषधि, रोग र पानीबाट पनि कहिल्यै मेरो मृत्यु नहोस्। पानीमा, भूमिमा, आसनमा, आकाशमा, घरमा, ढुङ्गोमा, माटमा, घाँसमा र रुखमा पनि मेरो मृत्यु नहोस्। रातमा पनि नमरूँ, दिनमा पनि नमरूँ, सुतेको बेलामा पनि नमरूँ, बसेको बेलामा पनि नमरूँ, खाँदा पनि नमरूँ, अकालमा पनि नमरूँ र रतिक्रीडा गर्न लागेको बेलामा पनि नमरूँ। हे सबैका पितामह ! यही वर म हजुरसित माग्छु। सबै दिन सक्ने हे ब्रह्मा ! दुःखी हजुरको भक्तलाई यिनै वर दिनुहोस् ॥११-१९॥

कार्तिक स्वामीले भन्नुभयो – हुन्छ भनी ब्रह्माजी हिमालयको शिखरमा त्यस दैत्य अर्थात् हिरण्यकशिपुलाई उसले चाहे अनुसारको वर दिएर अन्तर्धान हुनुभयो। हिरण्यकशिपु पनि ब्रह्माजीबाट वर पाएर विश्वधाराको जलमा स्नान गरी दैत्यहरूका साथ स्वर्ग गयो। त्यहाँ उसले बाह्र वर्षसम्म देवताहरूसित युद्ध गऱ्यो। इन्द्र आदि देवताहरूलाई उसले जित्यो। सबै देवताहरूलाई भगाएपछि सम्पूर्ण रत्नले युक्त भएको सुनको बाहिरी ढोका र पर्खाल भएको, नन्दन बगैँचा र अमरावती पुरीलाई उसले देख्यो ॥२०-२३॥

---

७. ब्रह्मणे ब्रह्मदेवाय ब्रह्माण्डजनिने नमः इति न.सं.पु.पाठः ।
८. तव इति न.सं.पु.पाठः ।
९. मयीदानीञ्च याचे इति न.सं.पु.पाठः ।

ददर्श नन्दनमृद्धं[१०] कल्पद्रुमैर्विराजितम्। नानापुष्पफलैर्युक्तं सर्वर्त्तूद्भवपुष्पकैः ॥२४॥
सम्प्रेक्ष्य नगरं भव्यं सदा सर्वसुखावहम्। परिवारैः समं स्थातुं तत्र दैत्यो मनो दधे[११] ॥२५॥
ततो व्योम्नस्त्वभूद्वाणी तस्मिँश्च समये मुने। सुधर्मायामवस्थातुं दैत्येन निर्णये कृते[१२] ॥२६॥

अलक्ष्य उवाच

रे रे दैत्या ! महामूढाश्चाज्ञानस्था न संशयः। न तिष्ठत चिरं[१३] यूयमत्र सुरपुरेऽसुराः ॥२७॥
यदि स्थास्यथ यूयं वै हठादेव पुरे भृशम्। भविष्यथ[१४] विलीनाश्च परिवारैः समन्ततः ॥२८॥
स्वहितं ये न जानन्ति न ते प्राप्स्यन्ति भावुकम्[१५]। यदि वेत्थात्मनः क्षेमं गच्छत[१६] साम्प्रतं क्षितिम् ॥२९॥

स्कन्द उवाच

अलक्ष्यस्य गिरं श्रुत्वा हिरण्यकशिपुस्तदा। समाहूय स दैत्येज्यममन्त्रयच्च मन्त्रिभिः ॥३०॥
तस्याञ्चैव सुधर्मायां सर्वलोकस्य पश्यतः। किं कर्तव्यमहो दैत्यः इति स्वीयैरमन्त्रयत्[१७] ॥३१॥

शुक्र उवाच

यदि पृच्छथ मां यूयं शृणुध्वं मे ऋतं वचः। ईश्वरस्य वचो दैत्य ! भविष्यति न चाऽनृतम् ॥३२॥
वयं यद्यत्र तिष्ठामो बहुसैन्यैर्युतास्तदा[१८]। अवश्यं प्रभविष्यामो विलीना भस्मसादपि ॥३३॥
दृगुन्मेषाग्निना पूर्वं त्रैलोक्यं हि ददाह सः। कदापि न तदाज्ञा वै भवेन्मिथ्या हि दानवाः ॥३४॥
न तिष्ठामो[१९] वयञ्चाऽत्र स्थाने बहुभयप्रदे। ये तिष्ठन्ति भयस्थाने ते हि विपत्तिभागिनः ॥३५॥
गच्छत[२०] दानवा यूयं हिमवत्कूटकेऽधुना। तत्र सुखञ्च तिष्ठामो गण्डक्यो यत्र मिश्रिताः ॥३६॥

---

विभिन्न किसिमका फूल फलले युक्त भएको, सबै ऋतुमा फुल्ने फूलले समृद्ध र कल्पवृक्षले सुशोभित नन्दन बगैंचालाई उसले देख्यो। सबै किसिमका सुखले युक्त भएको अत्यन्त भव्य शहरलाई देखेर उसले त्यहाँ आफ्नो परिवारका साथ बस्ने विचार गऱ्यो। हे अगस्त्य मुनि ! सुधर्मा नाम गरेको सभामा दैत्यले बस्ने निर्णय गरेपछि त्यसैबेला आकाशवाणी भयो ॥२४-२६॥

आकाशवाणीले भन्यो - हे मूर्ख दैत्य हो ! तिमीहरूमा ज्ञान छैन भन्ने कुरामा कुनै सन्देह छैन। हे राक्षस हो ! धेरै समयसम्म तिमीहरू अमरावतीमा नबस। यदि जबर्जस्तीसहित अमरावतीमा बस्यौ भने तिमीहरू आफ्ना परिवारसहितै विलीन हुनेछौ। तिमीहरू आफ्नो हित पनि जान्दैनौ, कल्याण पनि पाउँदैनौ, यदि आफ्नो हित चाहन्छौ भने अब तुरुन्त पृथ्वीतलमा गएर बस ॥२७-२९॥

कार्तिक स्वामीले भन्नुभयो - यस किसिमको आकाशवाणीको भनाइ सुन्नासाथ हिरण्यकशिपुले दैत्यगुरु शुक्राचार्यलाई बोलायो र सभामा बसेर मन्त्रीहरूका साथ सल्लाह गऱ्यो। त्यस सुधर्मानाक देवसभामा बसेका सबैले कस्तो निर्णय लिइन्छ भनी हेरिहेको अवस्थामा दैत्यराज हिरण्यकशिपुले आफ्ना मन्त्रीहरूसँग अब हामीले के गर्नुपर्छ भनी विचारविमर्श गऱ्यो ॥३०-३१॥

शुक्राचार्यले भन्नुभयो - यदि तिमीहरू मसँग सोध्छौ भने साँचो कुरा म बताउँछु। ईश्वरको भनाइ कहिल्यै पनि असत्य हुँदैन। यदि हामी यहीं बसिरहन्छौं भने आफ्ना सबै सैनिकहरूका साथ अवश्य नै खरानी भई यहीं विलीन हुनेछौं। आफ्नो तेस्रो आँखाबाट पैदा भएको अग्निद्वारा भगवान् शिवले त्रिपुरासुरका तीन पुरहरूलाई डढाउनुभएको थियो। उहाँको आज्ञा कहिल्यै पनि निष्फल हुँदैन ॥३२-३४॥

त्यसैले हामीले डरलाग्दो यस ठाउँमा बस्नुहुँदैन। डरलाग्दो ठाउँमा जो बस्छन्, तिनीहरू अवश्य विपद्का भागी हुन्छन्। हे दानव हो ! अब हामी जहाँ गण्डकीहरू मिसिएका छन्, त्यसै हिमालयको टाकुरामा जाऔं र आनन्दसँग बसौं ॥३५-३६॥

---

१०. नन्दनञ्च ददर्शाढ्यम् इति न.सं.पु.पाठः।
११. मनो दधे स तत्र वै इति न.सं.पु.पाठः।
१२. सुधर्मायां स्थिते दैत्ये स्थातुं सुनिर्णिते सति इति न.सं.पु.पाठः।
१३. न स्थातव्याश्चिरम् इति न.सं.पु.पाठः।
१४. भविष्यन्ति इति न.सं.पु.पाठः।
१५. न जानन्ति स्वत्महितन्न ते प्राप्यति भावुकान् इति न.सं.पु.पाठः।
१६. यदि वेदात्मनः क्षेमं गच्छध्वम् इति न.सं.पु.पाठः।
१७. निवृत्तं खलु वाच्याशु सुमन्त्रज्ञैरमन्त्रयत् इति न.सं.पु.पाठः।
१८. च वा इति न.सं.पु.पाठः।
१९. स्यातव्या इति न.सं.पु.पाठः।
२०. गच्छध्वम् इति न.सं.पु.पाठः।

स्कन्द उवाच

समाकर्ण्य गुरोर्वाचं हिरण्यकशिपुस्तदा। आज्ञापयच्च तान् दैत्यान् स्वर्गे प्रलुण्ठनाय च ॥३७॥
लुण्ठन्तु वस्तुजातं रेऽसुराः कोषान् सरत्नकान्[२१] । हस्त्यश्वयानवासांसि साम्प्रतं चाऽमरावतीम् ॥३८॥
दानवाश्चाऽमरावत्यां वस्तूनि यानि सन्ति ते[२२] । तानि[२३] सर्वाणि चाऽऽदाय देवतीर्थे समाययुः ॥३९॥
तत्र बह्वीः समा व्याप्य राज्यञ्चकार वै सुखम्। त्रैलोक्येभ्यः करान्नित्यमादाय बुभुजेऽसुरः ॥४०॥
प्रणेमुर्देवलोका वै प्रबद्धाञ्जलयो मुने। यत्र स्थितश्च दैत्येशः[२४] सम्प्रेक्ष्य तद्दिशं मुहुः ॥४१॥
देवासुराश्च गन्धर्वाः रक्षोयक्षोरगास्तथा। समुद्राश्च नृपा भूस्थास्तस्मै नित्यं करं ददुः ॥४२॥
स्वं स्वं वस्तु समाधाय शनैरागत्य चाऽन्तिके। तस्य भयेन सन्त्रस्ता ददुस्तस्मै करान्मुहुः ॥४३॥
एवं दशसहस्राब्दं राज्यञ्चकार तत्र सः। कृत्वा वश्यान् मुदा सर्वान् त्रैलोक्यान् करदांस्तथा ॥४४॥
ततो देवाः सगन्धर्वा विष्णोश्च शरणं ययुः। तद्बलैर्भ्रष्टराज्यास्ते सम्भूय बहुदेशतः ॥४५॥
अब्रूवन् देवतास्तस्मै विष्णवे लोकरक्षिणे। तद्बलैरर्दिता नित्यं तच्चेष्टाभिश्च[२५] दुःखिताः ॥४६॥

देवा ऊचुः

रक्ष रक्ष महाविष्णो ! दुःखितांस्तव किङ्करान्। हिरण्यकशिपोर्दैत्यात्तदोजोभिः समर्दितान् ॥४७॥
तद्दासा इव तिष्ठामस्तस्य[२६] च करदा वयम्। तच्छासने स्थिता नित्यं तस्यैव वन्दने रताः[२७] ॥४८॥
न बलीन्नार्हणं दायान्नाददमहे कदापि च। हविषस्तद्भयत्रस्ता रक्ष चाऽस्मांस्ततो विभो ॥४९॥

---

कार्तिक स्वामीले भन्नुभयो – गुरुको भनाइ सुनेर हिरण्यकशिपुले दैत्यहरूलाई स्वर्गको सम्पत्ति लुट्न अह्रायो। हे दैत्य हो ! अमरावतीभित्र रहेका रत्नयुक्त कोष, सामान, हात्ती, घोडा, वाहन, वस्त्र र सम्पूर्ण वस्तुहरू लुट। उसको आदेशअनुसार स्वर्गमा लुटपाट मच्चाएर दानवहरूले अमरावतीमा जति पनि वस्तुहरू थिए ती सबै लिए र देवतीर्थमा गए। त्यहाँ बसेर धेरै वर्षसम्म तीनै लोकसँग सधैँ कर लिएर राक्षसहरूले सुखपूर्वक राज्य गरे। दैत्यको अधिपति जहाँ रहेको छ त्यही दिशातिर हेरेर देवताहरूले हात जोडेर त्यसलाई नमस्कार गरे। देवता, असुर, गन्धर्व, राक्षस, यक्ष, सर्प, समुद्र र पृथ्वीमा रहेका सबै राजाले उसलाई सधैँ कर तिरे। आ–आफ्नो शरीर लिई बिस्तारै बिस्तारै त्यसको नजिकै आएर डरले आत्तिँदै उनीहरूले बारम्बार उसलाई तिरो तिरिरहे।यसरी दश हजार वर्षसम्म तीनै लोकलाई आफ्नो अधीन र करदाता बनाएर हिरण्यकशिपुले त्यहाँ राज्य गऱ्यो ॥३७–४४॥

त्यसपछि हिरण्यकशिपुको पराक्रमले गर्दा राज्यबाट भ्रष्ट भएका गन्धर्व र देवताहरू विभिन्न देशबाट जम्मा भएर विष्णुको शरणमा गए। हिरण्यकशिपुको पराक्रमबाट सताइएका त्यसका दैनिक कृत्यबाट पीडित देवताहरूले लोकका रक्षक विष्णुका सामु सबै कुरा निवेदन गरे ॥४५–४६॥

देवताले भने – हे महाविष्णु ! हिरण्यकशिपु र त्यस दैत्यका तेजले पीडित भएर दुःखित बन्न पुगेका आफ्ना भृत्यहरूको रक्षा गर्नुहोस्। हामी त्यस दैत्यका दासजस्तै भएर बसेका छौँ, त्यसलाई कर दिन्छौँ, त्यसको शासनमा रहेका छौँ र सधैँ त्यसलाई प्रणाम गर्छौँ। हिरण्यकशिपुका डरले हामी पूजा, वलि, हवि, पुरोडाश, दान आदिको भाग पनि कहिल्यै ग्रहण गर्दैनौँ। त्यसैले हे प्रभो ! हामीहरूको रक्षा गर्नुहोस् ॥४७–४९॥

---

२१. लुलुण्ठ रे सुरा वस्तून् कोषान् रत्नप्रपूरितान् इति न.सं.पु.पाठः।
२२. यावद्वस्तूनि सन्ति च इति न.सं.पु.पाठः।
२३. तानि इति न.सं.पु.पाठः।
२४. यत्र स्थितञ्च दैत्येशम् इति न.सं.पु.पाठः।
२५. तच्चेष्टयञ्च इति न.सं.पु.पाठः।
२६. तस्मै इति न.सं.पु.पाठः।
२७. तस्मै प्रणमिताः सदा इति न.सं.पु.पाठः।

स्कन्द उवाच।

आकर्ण्य वचनं विष्णुर्देवानाञ्च चुकोप ह[२८]। आश्वासयत् पुनर्देवान् सर्वलोकानुकम्पकः ॥५०॥
सन्दध्यौ भगवान् विष्णुस्तद्वधोपायमाशु च। प्रययौ स च संस्नातुं विश्वधाराजले शुभे ॥५१॥
स चैकाकी नदीतोये गत्वा सस्नौ हरिर्मुदा। तस्याञ्च तद्वधं कर्तुं कामयन् स वरं मुहुः[२९] ॥५२॥
जलदेवी समुत्तीर्य विष्णवे सा वरं ददौ[३०]। वधोपायं समुद्दिश्य तिरोदधे जले शुभे ॥५३॥
ततो विष्णुः ममार्जाऽऽशु चाऽऽत्मानमात्मना तदा। नरदेहमधोभागे चोर्ध्वे सिंहकलेवरम् ॥५४॥
तुषाराद्रिसमं देहं विकटास्यं सुदंष्ट्रिणम्। व्यादायोष्ठं सरोमाणं ह्यूर्ध्वकेशं नखायुधम् ॥५५॥
एवं रूपं समास्थाय नरहरितनुं हरिः। देवो नृसिंहरूपोऽसौ यत्रासुराः स्थिता ययौ ॥५६॥
हिरण्यकशिपौ दैत्ये सभायां संस्थिते समम्। योजनैकप्रमाणायां गीतवाद्यमहोत्सवैः ॥५७॥
वन्दिभिः स्तूयमाने हि प्रेक्ष्यमाणे च नर्त्तकान्। सेव्यमाने मुदा दैत्यैर्मन्त्रिभिर्मन्त्रयन् स्थिते ॥५८॥
क्रोशमात्रे विदूरे तद्दैत्यपुरसभास्थलात्[३१]। तस्थौ नृसिंहरूपोऽसौ हुङ्कारैर्गाढगर्जनः ॥५९॥
ददृशुस्ते ततो दैत्या नरसिंहं महातनुम्। पुरस्थिताः सभायाश्च गर्जन्तं रोषपूर्वकम्[३२] ॥६०॥
सुविस्मयं तदा प्राप्तास्तमभिप्रेक्ष्य सत्वरम्। कथयन्ति स्म ते दैत्या दैत्येशायैवमद्भुतम् ॥६१॥

---

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! सबै प्राणीमाथि अनुकम्पा राख्नुहुने विष्णु भगवान् देवताहरूको वचन सुनेर रिसाउनुभयो र देवताहरूलाई आश्वासन दिनुभयो। भगवान् विष्णुले तुरुन्तै त्यसलाई मार्ने उपाय सोच्नुभयो। अनि विश्वधाराको कल्याणदायक जलमा स्नान गर्न जानुभयो। त्यसपछि एक्लै भगवान् विष्णुले हिरण्यकशिपुलाई वध गर्ने वरको कामना गर्दै त्यस नदीमा गएर स्नान गर्नुभयो। त्यसपछि जलदेवीले जलबाट बाहिर निस्किएर विष्णुलाई वर दिनुभयो। उहाँलाई राक्षसहरूको वध गर्ने उपाय देखाइदिएर उहाँ उही पवित्र जलमा नै अन्तर्धान हुनुभयो ॥५०-५५॥

अनि भगवान् विष्णुले तल्तिर मानिसको शरीर र मास्तिर सिंहको शरीर भएको स्वरूप आफैँले लिनुभयो। उहाँको शरीर हिमालयजस्तो थियो, मुख डरलाग्दो देखिन्थ्यो, तल्लो ओठले पाताललाई र माथिल्लो ओठले आकाशलाई छुन्छन् कि भने झैँ गरेर उहाँले मुख बनाउनुभएको थियो, अङ्गभरि रौँ र शिरमा ठाडा ठाडा केश थिए, नङरूपी हतियार धारण गर्नुभएको थियो। यसरी विष्णु भगवान्ले मान्छे र सिंहको मिश्रित रूप लिएर नृसिंह अवतार धारण गर्नुभयो र जहाँ राक्षस बसेका थिए, त्यसै ठाउँमा जानुभयो ॥५४-५६॥

हिरण्यकशिपु दैत्य एक योजन ठूलो सभामा आनन्दसित बसेको थियो। गाना-बजानासहित उत्सवहरू भइरहेका थिए। स्तुतिपाठकहरूले स्तुति गरिरहेका थिए, दैत्य नाँच हेरिरहेको थियो। दैत्यहरूले उसको सेवा गरिरहेका थिए, मन्त्रीहरूले त्यसलाई सल्लाह दिइरहेका थिए। त्यो दैत्यको सभा भइरहेको स्थानबाट एक कोश टाढा रहेको स्थानमा बसेर नृसिंहावतार भगवान्ले हुङ्कारद्वारा ठूलो गर्जन गर्नुभयो। त्यसपछि सभाको अगाडि बसेका दैत्यहरूले ठूलो स्वरले बारम्बार गर्जन गरिरहेका विशालकाय नृसिंहको शरीरलाई देखे। नरसिंहलाई देखेर राक्षसहरू तुरुन्त आश्चर्यचकित भए, अनि उनीहरूले यस्तो अद्भुत स्वरूपका बारेमा हिरण्यकशिपुलाई बताए ॥५७-६१॥

---

२८. रुरोषे च इति न.सं.पु.पाठः।
२९. प्रार्थयन् हि वरान् मुहुः इति न.सं.पु.पाठः।
३०. ददौ वरांश्च विष्णवे इति न.सं.पु.पाठः।
३१. तद्दैत्यसभापुरस्थले इति न.सं.पु.पाठः।
३२. गर्जयन्तः स्वरैर्मुहुः इति न.सं.पु.पाठः।

दैत्या ऊचुः

अद्‌भुतञ्च महाराज ! दृष्टमस्माभिरद्य च। नरस्य च हरेश्चैव ह्येकभूतां द्वयोस्तनुम् ॥६२॥

सिंहवक्त्रं नराङ्घ्रिं तं जृम्भमाणञ्च दंष्ट्रिणम्। गर्जन्तं[३३] च सुभीष्माङ्गमूर्ध्वकेशं नखायुधम् ॥६३॥

न पूर्वं दृष्टमस्माभिर्देहञ्च तादृशं क्वचित्। द्रष्टव्यं भवता राजन् दृश्यमेतत् सकौतुकम्[३४] ॥६४॥

हिरण्यकशिपुरुवाच

विद्युज्जिह्व ! सुचक्राक्ष ! तीक्ष्णदंष्ट्र ! सुरान्तक। आनयत यूयं शीघ्रं[३५] जन्तुं तं विकटाननम् ॥६५॥

वचोभिर्यदि नाऽऽयाति बद्ध्वाऽऽनयत रे लघु[३६]। गृहीत्वा वाऽथ तं सैन्यैः भाययन्तस्तमायुधैः[३७] ॥६६॥

स्कन्द उवाच

ततस्ते दानवा भीष्मा जग्मुस्तत्र महाबलाः। समादाय प्रभोराज्ञां बन्धनाय च साम्प्रतम् ॥६७॥

गत्वा तत्र महादैत्याः पृतनाभिः समन्तदा। मधुरयन्समूचुस्तं जन्तो शीघ्रं[३८] व्रजेति च ॥६८॥

दैत्यानामीश्वरो यत्र तिष्ठति तत्र गच्छ वै। जन्तुं त्वां द्रष्टुकामोऽसौ जन्तो ! मा भीयतां त्वया ॥६९॥

स्कन्द उवाच

नाऽवोचत् स प्रभुः किञ्चित् दानवै प्राप्तसान्त्वनः[३८क]। तूष्णीमासीद्वचः श्रुत्वा यथा फेरुरुतं[३९] हरिः ॥७०॥

न चचार वचोभिः स चाऽमर्षैः पूरिताश्च ते। प्रचक्रिरे च ताः सेना बन्धनाय च तं तदा ॥७१॥

नागपाशान् समाक्षिप्य तस्योपरि च दानवाः। जगृहुर्युगपत्तं ते भीषयन्तो वरायुधैः[४०] ॥७२॥

---

दैत्यहरूले भने – हे महाराज ! हामीहरूले आज मान्छे र सिंह दुबै जोडिएको एउटा अद्‌भुत शरीर देख्यौँ। त्यसको मुख सिंहको जस्तो थियो, गोडा मान्छेका थिए, दाँत देखाएर हाइ गरिरहेको थियो। डरलाग्दो अङ्ग, ठाडा केश र हतियारजस्ता नङ थिए, त्यो जन्तु गर्जन गरिरहेको थियो। यसभन्दा अघि हामीले त्यस्तो रूप कतै पनि देखेका थिएनौँ। हे राजन् ! आश्चर्यजनक यो जन्तुलाई हजुरले पनि हेर्नुपर्छ ॥६२-६४॥

हिरण्यकशिपुले भन्यो – हे विद्युज्जिस्व ! हे सुचक्राक्ष ! हे तीक्ष्णदष्ट्र ! हे सुरान्तक ! तिमीहरूले त्यस डरालाग्दो मुख भएको जन्तुलाई तुरुन्त यहाँ लिएर आओ। यदि त्यो आफैं आएन भने बाँधेर अथवा शस्त्र, अस्त्र र सेनाद्वारा डर देखाएर त्यसलाई लिएर आओ ॥६५-६६॥

कार्तिक स्वामीले भन्नुभयो – त्यसपछि डरलाग्दा र बलिया ती दानवहरू हिरण्यकशिपुको निर्देशनअनुसार नरसिंहलाई बाँधेर ल्याउनका लागि तुरुन्त प्रस्थान गरे। सेनाहरूलाई साथमा लिएर ती दैत्यहरू त्यसबखत त्यहाँ गए र मीठो बोलीले हे जन्तु ! हिंड हिंड भने। जहाँ दैत्यराज बस्नुभएको छ त्यस ठाउँमा तिमी हिंड, तिमीलाई उहाँ हेर्न चाहनुहुन्छ, तिमीले डराउनुपर्दैन ॥६७-६९॥

कार्तिक स्वामीले भन्नुभयो – दैत्यहरूले फकाए पनि भगवान् नृसिंहले केही बोल्नुभएन, स्यालको आवाज सुनेर सिंह चुप लागेर बसे झैँ उहाँ पनि चुपचाप बस्नुभयो। जति बोले पनि भगवान् चल्नुभएन, त्यसपछि दैत्यहरू क्रुद्ध भए। ती सेनाहरूलाई नृसिंहलाई बाँध्न थाले। नृसिंहमाथि दानवहरूले नागपाश फ्याँके, एकैचोटि शस्त्रले डर देखाए र उनीहरूले नृसिंहलाई समात्न खोजे ॥७०-७२॥

---

३३. गर्जमानम् इति न.सं.पु.पाठः।
३४. कौतूहलमपूर्वकम् इति न.सं.पु.पाठः।
३५. यूयमानीयताञ्चात्र इति न.सं.पु.पाठः।
३६. यदि नायाति वाचोभिर्वा बध्वानीयतां लघु इति न.सं.पु.पाठः।
३७. अथवा गृह्य तं सैन्यैः शस्त्रास्त्रैर्भीपयंस्तथा इति न.सं.पु.पाठः।
३८. गच्छ इति न.सं.पु.पाठः।
३८क. सान्त्वयन्नपि दैत्यैः स नावोचत्किमपि प्रभुः, इति न.सं.पु.पाठः।
३९. फेरुरुतैः इति न.सं.पु.पाठः।
४०. उद्यच्छस्त्रैः प्रभीषयन् इति न.सं.पु.पाठः।

क्रोधेन मूर्च्छितः सद्यो नरसिंहो महाद्भुतः। नखैर्बिभेद तान् दैत्यान् तलेनाऽताडयद्बहून् ॥७३॥
पेतुर्दैत्या रसायान्ते वज्राहता द्रुमा इव। नखैर्विदारितास्तस्य व्यसवश्च क्वचित्पुनः ॥७४॥
ततश्च युगपद्दैत्याः शस्त्रास्त्राणि रणाङ्गणे[४१]। तस्योपरि समुद्दिश्य चिक्षिपुराशु दूरतः ॥७५॥
ववृषुस्ते शरान् दैत्याः नृसिंहस्योपरि द्रुतम्[४२]। शुचौ व्योम्नो यथा चक्रुर्नानाशस्त्रास्त्रवर्षणम्[४३] ॥७६॥
शस्त्रास्त्राणि च सर्वाणि पूरितानि हि दानवैः[४४]। प्रभुरादाय[४५] हस्ताभ्यां मुखे चिक्षेप सत्त्वरम् ॥७७॥
तच्छस्त्रास्त्राणि सर्वाणि तन्मुखे पतितानि च। इन्धनानीव दग्धानि[४६] वह्निशिखार्च्चिषि मुने ॥७८॥
अमर्षपूरितो देवो नरसिंहस्तथा पुनः। मुखं व्यादाय तत्रैव तस्थौ श्वसन्भयङ्करम् ॥७९॥
ततश्च दैत्यराजोऽसौ हिरण्यकशिपुः पुनः। सैन्यानां वचनं श्रुत्वा प्रमुमूर्च्छ रुषा भृशम् ॥८०॥
सन्नह्य कवचेनाऽऽशु सर्वशस्त्रास्त्रसंयुतः। जगाम त्वरितं पद्भ्यां यत्रास्ते नृहरिर्मुने ॥८१॥

हिरण्यकशिपुरुवाच

भो भो दैत्या महात्मानो रुन्धन्तां जन्तुमद्भुतम्। हन्यन्ताञ्चाऽऽशु शस्त्रास्त्रैश्चतुर्दिग्भ्यश्च सन्ततम् ॥८२॥
वर्षन्ताञ्च शरान् बाणान्[४७] तमुद्दिश्य च सत्वरम्। हनिष्यामि ततो जन्तुं खड्गेन शक्तिभिः पुनः ॥८३॥

स्कन्द उवाच

श्रुत्वा च दैत्यराजस्य वचो दैत्याश्च साम्प्रतम्। तमभिदुद्रुवुर्विप्र ! सर्वशस्त्रास्त्रपाणयः ॥८४॥
ववृषुस्ते शरान् वाणान्[४८] तमभीक्ष्य समन्ततः। नानाशस्त्रास्त्रजालैस्तं जघ्नुश्च क्रोधिनोऽसुराः ॥८५॥

---

अत्यन्त आश्चर्यजनक रूप लिने भगवान् नृसिंह तुरुन्त क्रुद्ध हुनुभयो, ती दैत्यहरूलाई नङले चिर्नुभयो र धेरैलाई थप्पडले हिर्काउनुभयो। नङले चिथरिएका दैत्यहरू वज्र लागेका रुखजस्तै बनेर भूमिमा पछारिए। फेरि कसैको प्राण पनि गयो। त्यसपछि तुरुन्त दैत्यहरूले नृसिंहलाई तोकेर उहाँमाथि एकैचोटि शस्त्र तथा अस्त्रहरू फ्याँके। आषाढ महिनामा आकाशबाट पानी बर्सिए झैं गरी नृसिंहमाथि विभिन्न किसिमका शस्त्र र अस्त्रहरूको ठूलो वर्षा भयो। उहाँमाथि फ्याँकिएका सबै शस्त्र–अस्त्रहरूलाई नृसिंहले पनि हातले समातेर तिनकै मुखभित्र हालिदिनुभयो ॥७३–७७॥

हे अगस्त्य मुनि ! ती राक्षसका सबै अस्त्र–शस्त्रहरू आगाको ज्वालामा परेको दाउराजस्तै भएर नृसिंहका मुखमा परे। रीसले क्रुद्ध भएका भगवान् नृसिंह मुख बाएर डरलाग्दो सास फेर्दै त्यसै ठाउँमा बस्नुभयो। त्यसपछि सेनाबाट सबै वृत्तान्त थाहा पाएर हिरण्यकशिपु रीसले खूबसित मूर्च्छा पर्‍यो। त्यस दैत्यले तुरुन्त कवच लगायो, सम्पूर्ण शस्त्र र अस्त्र लियो र जहाँ भगवान् नृसिंह हुनुहुन्थ्यो, त्यस ठाउँमा पैदलै गयो ॥७८–८१॥

हिरण्यकशिपुले भन्यो – हे ठूला–ठूला दैत्य हो ! त्यो अद्भुत जन्तुलाई चारै दिशाबाट छिट्टै छेक। त्यसमाथि बारम्बार शस्त्र तथा अस्त्र प्रहार गर। त्यसलाई ताकेर छिट्टै बाण वर्षा गर। त्यसपछि म त्यस जन्तुलाई तरवार र शक्तिले मार्नेछु ॥८२–८३॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! दैत्यराजको त्यो कुरा सुनेर हातमा अनेकौं शस्त्र र अस्त्र लिएका दैत्यहरू दौडिए। क्रुद्ध राक्षसहरूले नृसिंहलाई देख्नासाथ उहाँमाथि विभिन्न शस्त्र अस्त्र तथा बाणहरू वर्षा गरे। माया रच्न सिपालु भएका ती राक्षसहरूले अन्तरिक्षमा बसेर ढुङ्गा, रुख, थुम्का, असिना र पानीको वर्षा गरे ॥८४–८५॥

---

४१. च तन्मुखम् इति न.सं.पु.पाठः।
४२. ववर्षुःशरवर्षाणि सिंहस्योपरि निर्भरम् इति न.सं.पु.पाठः।
४३. नानाशस्त्रास्त्रवर्षाणि चाषाढे नभसीव च इति न.सं.पु.पाठः।
४४. तत्प्रेरितानि सर्वशः इति न.सं.पु.पाठः।
४५. तान्यादाय इति न.सं.पु.पाठः।
४६. अक्षीयन्तेन्धनानीव इति न.सं.पु.पाठः।
४७. शरवर्षाणि इति न.सं.पु.पाठः।
४८. ववर्षुः शरवर्षाणि इति न.सं.पु.पाठः।

पाषाणवृक्षसानूनि सकरकानि वारिदाः। मायाविनोऽन्तरिक्षस्था ववृषुरसुरा[४९] भृशम् ॥८६॥
असहद् भगवाँस्तत्र बहुशस्त्रास्त्रवर्षणम्[५०]। पीड्यमाना यथा गाव आषाढे नभसीव च ॥८७॥
भगवान्नरसिंहोऽसौ तदा विराजते भृशम्। मासे च माधवे भद्र किंशुकद्रुमवत्परम् ॥८८॥
हिरण्यकशिपुश्चैव शरासारान् ववर्ष च। अमर्षैः पूरितो दैत्यो देवस्योपरि सन्ततम् ॥८९॥
दृष्ट्वा तां तस्य दुश्चेष्टां देवे प्रहरणं ततः। प्रह्लादश्च महावीरो व्याचष्ट पितरं द्रुतम्[५१] ॥९०॥

प्रह्लाद उवाच

मा मा प्रहर विश्वेशे[५२] शस्त्रास्त्रैस्तात कोपतः। शस्त्रास्त्राणि च सर्वाणि संहराशु च साम्प्रतम् ॥९१॥
न हि भवेदयं जन्तुस्त्वं मा जानीहि तं पशुम्। साक्षात्स भगवान् विष्णुः केवलं ब्रह्म निष्कलम्[५३] ॥९२॥
प्रहारैरीदृशैर्जन्तुः कः सहते विभुं विना[५४]। शस्त्रास्त्रवर्षणासारैः विष्णुं विना सहेत कः ॥९३॥
इन्द्रादयः सुराः सर्वे तवास्त्रैश्च पलायिताः। त्वच्छस्त्रपातनं जन्तुः सहते च कथं वद[५५] ॥९४॥
यमाराध्य हि भक्त्याऽऽशु प्राप्यते चेप्सितं फलम्। सार्वभौमञ्च मोक्षञ्च स कथं हन्यते पितः ॥९५॥
ब्रह्मेशयोर्न भेदोऽस्ति सर्वव्यापी सदच्युतः। सर्वं दातुं क्षमो विष्णुः स कथं ताड्यते शरैः ॥९६॥
इच्छारूपो महादेवो ह्यबाधगमनो विभुः। एकां मूर्तिं न चेशस्य मूर्तीस्ता विविधा विदुः[५६] ॥९७॥
न दत्तं तेन दुःखं नो ह्यतो दूरे स्थितः पितः। एकाकिनो विचरतो नागांसि तस्य विद्यते ॥९८॥

---

माया रच्न सिपालु भएका ती राक्षसहरूले अन्तरिक्षमा बसेर ढुङ्गा, रुख, थुम्का, असिना र पानीको वर्षा गरे। असार महिनाको वर्षालाई गाईहरूले सहेजस्तै अनेकौं शस्त्र अस्त्रको वृष्टिबाट पीडित भए तापनि त्यो सबै भगवान् नृसिंहले सहनुभयो। त्यसबखत भगवान् नृसिंह वसन्त ऋतुको पलाशको रुखजस्तै भएर अत्यन्त सुशोभित हुनुभएको थियो ॥८४-८८॥

हिरण्यकशिपु दैत्यले पनि क्रुद्ध भएर नृसिंह भगवान्माथि बारम्बार बाणहरूको वर्षा गऱ्यो। भगवान् नृसिंहमाथि त्यस किसिमको खराब काम भएको देखेर महावीर प्रह्लादले आफ्ना बाबु हिरण्यकशिपुलाई भने ॥८४-९०॥

प्रह्लादले भने - हे बुबा ! रिसाएर शस्त्र र अस्त्रले ईश्वरलाई नहिर्काउनुहोस्। सम्पूर्ण शस्त्र तथा अस्त्रहरू अब तुरुन्तै खिँच्नुहोस्। यो सामान्य जन्तु होइन, यसलाई पशु भनेर तपाईं नठान्नुहोस्। उहाँ निष्कल ब्रह्मरूप भएका साक्षात् भगवान् विष्णु हुनुहुन्छ। कुन चाँहि प्राणीले यस्तो प्रहारलाई खप्न सक्छ ? मलाई भन्नुहोस्। विष्णुबाहेक अरू कसले यो शस्त्र अस्त्रको वर्षालाई सहन सक्ला ? इन्द्र आदि गरिएका देवताहरू त तपाईंको अस्त्रदेखि डराएर भागे, तपाईंको शस्त्रको प्रहारलाई सामान्य जन्तुले कसरी सहन सक्छ ? ॥९१-९४॥

हे बुबा ! जसको आराधना गऱ्यो भने इच्छा लागेको फल प्राप्त हुन्छ, चक्रवर्तित्व उपलब्ध हुन्छ, मोक्ष पाइन्छ, त्यस्तो पुरुषलाई किन तपाईं मार्न उद्यत हुनुभएको छ ? ब्रह्म र ईश्वरमा कुनै भेद छैन। उहाँ सर्वव्यापक, सत्स्वरूप र अच्युत हुनुहुन्छ। विष्णु सबैथोक दिन सक्नुहुन्छ, उहाँलाई बाणले कसरी हान्दै हुनुहुन्छ ?। जुनसुकै ठाउँमा पनि निर्बाध गतिले पुग्न सक्ने महादेवको इच्छास्वरूप छ। ईश्वरका एउटै मात्र मूर्ति हुँदैनन्, धेरै मूर्ति हुन्छन् भन्ने कुरा बुझ्नुहोस्। त्यस जन्तुले हामीलाई कुनै दुःख दिएको छैन, यहाँबाट धेरै टाढा छ। एक्लै हिँडिरहेको छ, त्यसको कुनै अपराध छैन ॥९५-९८॥

---

४९. ववर्षुरसुरा इति न.सं.पु.पाठः।
५०. वृष्टिभिः इति न.सं.पु.पाठः।
५१. महावीरः पित्रे व्याचष्ट सत्वरम् इति न.सं.पु.पाठः।
५२. प्रहारस्यार्येशम् इति न.सं.पु.पाठः।
५३. ब्रह्मरूपिणम् इति न.सं.पु.पाठः।
५४. प्रहारैरीदृशैर्जन्तुः सहते को वदस्व मे इति न.सं.पु.पाठः।
५५. जन्तुर्वद तात कथं सहेत् इति न.सं.पु.पाठः।
५६. एका मूर्तिर्न चैशस्य बहवो मूर्तयो विदुः इति न.सं.पु.पाठः।

स्वेच्छागतिर्महादेवो वने चरति निष्कलम्[५७]। तच्चालनान्न भद्रं नः सुप्ताहिचालनादिव ॥९९॥
भजस्वेमं हरिं तात ! यस्मात् शिवं प्रलप्स्यसे। शस्त्रास्त्राणि च सन्त्यज्य क्षमस्वेति वदन्विभो ॥१००॥
प्रणम्यतां परिक्रम्य ततः शुभं भविष्यति। नैवञ्चेत् क्रियते तात ! तव नाशो[५८] भविष्यति ॥१०१॥

हिरण्यकशिपुरुवाच

सर्वो हि मन्यते लोक आत्मानं बुद्धिमत्तरम्। सर्वस्यात्मा च बहुशः स्वमात्मानं[५९] प्रशंसति ॥१०२॥
सर्वस्य हि स्वका प्रज्ञा साधुवादे प्रतिष्ठिता। परबुद्धिञ्च निन्दन्ति स्वां प्रशंसन्ति चासकृत् ॥१०३॥
वल्गन्ति भीरवो युद्धे प्राङ्मुखमिच्छुका जनाः। न प्रहरन्त्यायुधाश्चैव भीरूणाञ्चैव लक्षणम् ॥१०४॥
सम्प्रेक्ष्य साम्प्रतं जन्तुं सन्त्रस्तो यो हि कातरः। दृष्ट्वा युद्धोन्मुखं वीरं स कथं युधि योत्स्यति[६०] ॥१०५॥
गच्छ प्रह्लाद गेहं स्वं करोतु शयनं सुखम्[६०क]। निद्रालूनाञ्च शय्यायां सङ्गरात् का विभीषिका[६१] ॥१०६॥
एकं जन्तुञ्च संप्रेक्ष्य त्रस्तः कम्पन्[६२] च वल्गसे। यतो ममात्मजो[६३] भूत्वा धिगस्तु ते पराक्रमम् ॥१०७॥

स्कन्द उवाच

एवं तं बहुवाग्बाणैर्हिरण्यकशिपुः सुतम्। विनिन्दन् ताडयामास समरे वीरसन्निधौ[६४] ॥१०८॥
धिक्कारञ्च ततः कृत्वा प्रह्लादं विष्णुसेवकम्[६५]। सैन्यान्यादिश्य युद्धाय शरैः सिंहं तताड ह[६६] ॥१०९॥
पाषाणं पादपं सानु लोहशस्त्रानि तानि च[६७]। तन्मुखे निचखानाशु प्रक्षिप्य च पृथक् पृथक् ॥११०॥

---

भगवान् आफ्नो इच्छाअनुसार वनमा आनन्दसित हिँडिरहनुभएको छ। सुतेको सर्पलाई चलाएको जस्तो गरेर उहाँलाई चलाउँदा हाम्रो कल्याण हुँदैन। हे बुबा ! शस्त्र अस्त्र सबै फालेर हे प्रभु ! मलाई रक्षा गर्नुहोस् भन्दै भगवान् विष्णुको भजन गर्नुहोस्, यसबाट कल्याण पाउनुहुनेछ। हे बुबा ! परिक्रमा गरेर उहाँलाई ढोगौं, त्यसैबाट कल्याण हुनेछ। यदि यसो गरेनौं भने हजुरको नाश हुनेछ ॥९९-१०१॥

हिरण्यकशिपुले भन्यो– संसार सबै आफूलाई सबैभन्दा बुद्धिमानी ठान्छ, धेरैजसो सबैको आत्माले आफूलाई नै प्रशंसा गर्छ। सबैको आफ्नो बुद्धि नै ठीक छ भन्ने हुन्छ, अर्काको सोचाइलाई निन्दा गर्छन्, सधैं आफ्नो बुद्धिको मात्र प्रशंसा गर्छन्। रणभूमिमा जान नचाहने कातरहरू खूबसित उफ्रन्छन्। बल्लतल्ल गइहाले पनि हतियार प्रहार गर्दैनन्, कातरहरूको यस्तै लक्षण हुन्छ। जन्तुको अङ्ग देख्नेबित्तिकै जो व्यक्ति अहिले डराइराखेको छ, त्यसले युद्धमा लडाकुसित कसरी युद्ध गर्ला ? हे प्रह्लाद ! तँ घर जा, आनन्दसित सुत, शय्यामा निदाएको मान्छेलाई युद्धबाट केको डर हुन्छ ?। मेरो छोरो भएर पनि एउटा जन्तुलाई देख्दा डराएर थर्कन्छस्, तेरो पराक्रमलाई धिक्कार छ ॥१०२-१०७॥

कार्तिक स्वामीले भन्नुभयो – यसरी धेरै वचनरूपी बाणहरूको प्रयोग गरेर युद्धमा हिरण्यकशिपुले दुनियाँको सामु छोरालाई गाली गर्‍यो र बारम्बार पिट्यो। विष्णुका भक्त प्रह्लादलाई गाली गरेपछि हिरण्यकशिपुले सेनाहरूलाई युद्धका निमित्त आदेश दियो अनि त्यस जन्तुलाई बाणले हिर्कायो। ढुङ्गा, रुख, थुम्का र फलामबाट बनेका वस्तुहरू उसले नृसिंहको मुखमा छुट्टाछुट्टै फ्याँक्यो ॥१०८-११०॥

---

५७. निर्भरम् इति न.सं.पु.पाठः।
५८. निर्मूला नो इति न.सं.पु.पाठः।
५९. सर्वात्मानम् इति न.सं.पु.पाठः।
६०. संप्रेक्ष्य चैव जन्तुञ्च सन्त्रस्तो हि च साम्प्रतम्। अङ्गं दृष्ट्वा च योद्धारं स कथं युधि योत्स्यति इति न.सं.पु.पाठः।
६०क. शेतां तत्र यथासुखम् इति न.सं.पु.पाठः।
६१. कुतो भयञ्च युद्धतः इति न.सं.पु.पाठः।
६२. त्रस्तमानञ्च वल्गसे इति न.सं.पु.पाठः।
६३. मे चात्मजो यतो इति न.सं.पु.पाठः।
६४. गर्हयन् युधि लोकांश्च दर्शयन् ताडितो मुहुः इति न.सं.पु.पाठः।
६५. विष्णुभक्तिनम् इति न.सं.पु.पाठः।
६६. सैन्यानाज्ञाप्य युद्धाय पुनस्तताड तं शरैः इति न.सं.पु.पाठः।
६७. सानु लोहप्रघटितानि च इति न.सं.पु.पाठः।

शक्तिञ्च तोमरं वज्रं परिघं परशुं गदाम्। खट्वाङ्गं भिन्दिपालञ्च चक्रं शूलं तथायुधम् ॥१११॥
हिरण्यकशिपुश्चैतान्निचखान च तन्मुखे। शस्त्रास्त्राणि तमुद्दिश्य कोटिशः प्राक्षिपत् पुनः[६८] ॥११२॥
ततो नरहरिर्देवो व्यादाय च मुखेन तान्। क्षुद्रप्लवान्यथा सर्पो न्यगिलत् लीलया तदा[६९] ॥११३॥
सर्ववृद्धमहाकायं भगवन्तं महाद्भुतम्। हिरण्यकशिपुः प्रेक्ष्य तस्य चेष्टां विलक्षणाम् ॥११४॥
ततश्च सोऽपि क्रोधेन वर्धयामास स्वां तनुम्[७०]। भगवन्तं समालोक्य प्रहन्तुमसिमाददे ॥११५॥
खड्गमुद्यम्य दैत्येशः प्रहाराय च तं पुनः। अभिदुद्राव जवतः प्रदीपं शलभो यथा ॥११६॥
देवाश्च मुनयो यक्षा गन्धर्वाः किन्नरास्तथा। त्रेसुर्दैत्याश्च तौ प्रेक्ष्य महाकायौ महाद्भुतौ ॥११७॥
शुक्रो जजाप दैत्यानां प्रभोर्जयाय साम्प्रतम्। गुरुर्जजाप देवानां प्रभो जयाय सत्वरम् ॥११८॥
ऊचुश्च दानवाः सर्वे जयतु दैत्यराडिति[७१]। ऊचुः सिद्धाश्च देवाश्च नृसिंहो जयतादिति[७२] ॥११९॥
सम्प्रेक्ष्य दैत्यराजं तं हन्तुं सखड्गमुद्यतम्[७३]। विष्णुर्जग्राह पाणिभ्यां नखमानं दितेः सुतम्[७४] ॥१२०॥
विवेशासुरराजोऽसौ भगवन्नखकन्दरे। भगवानपि तं पाणौ दृष्टवान् नैव हे मुने[७५] ! ॥१२१॥
ततो ददर्श दैत्यं स्वे विशन्तं नखकन्दरे। अचिन्तयत्तदा विष्णुः सूक्ष्मयितुं स्वविग्रहम् ॥१२२॥
ततश्चकार सूक्ष्मञ्च नरसिंहः स्वविग्रहम्। तत्प्रमाणं समाधाय स्वोर्वोरस्थापयच्च तम् ॥१२३॥
स्वोर्वोश्चाशु तमास्थाय दोर्भ्यां लोकान्प्रदर्शयन्। उद्बिभेद च तद्वक्षो नरसिंहो नखैः खरैः ॥१२४॥

---

शक्ति, तोमर, वज्र, घन, वञ्चरो, गदा, खट्वाङ्ग, तोप, चक्र, त्रिशूल र अरू शस्त्रहरू हिरण्यकशिपुले नृसिंहको मुखमा फ्याँक्यो। त्यस्तै अन्य करोडौं शस्त्र अस्त्रहरू छुट्टाछुट्टै रूपमा उसले नृसिंहमाथि फ्याँक्यो। त्यसपछि भगवान् नृसिंहले यी सबै अस्त्र शस्त्रहरूलाई सर्पले क्षुद्र जन्तुलाई जस्तै गरी सजिलैसित निलिदिनुभयो ॥१११-११३॥

सबैभन्दा ठूलो शरीर भएका आश्चर्यजनक स्वरूप भएका भगवान् र उहाँका क्रियाकलापलाई देखेर दैत्यको राजा हिरण्यकशिपु पनि अत्यन्त क्रुद्ध भयो अनि नृसिंहलाई मार्न तरबार निकाल्यो। दैत्यको राजा हिरण्यकशिपु तरबार उज्याएर दियोमा पुतली हाम फाले झैं गरी नृसिंहमाथि जाइलाग्यो। अत्यन्त ठूलो शरीर भएका आश्चर्यजनक ती दुबै याद्धालाई देखेर देवता, ऋषि, यक्ष, गन्धर्व, किन्नर तथा दैत्यहरू डराए ॥११४-११७॥

शुक्रले दैत्यका मालिक हिरण्यकशिपुको विजय होस् भनेर जप गरे। देवताका गुरु बृहस्पतिले भगवान्‌को विजय होस् भनेर जप गरे। दानवहरूले हिरण्यकशिपुले नै जितून् भने। सिद्ध र देवताहरूले भगवान्‌ले नै जित्नुहोस् भने। हातमा तरबार लिएर आफूमाथि प्रहार गर्न तयार भएको देखेर तरङ्गजस्तो चञ्चल त्यस दैत्यराजलाई भगवान् विष्णुले दुई हातमा समात्नुभयो। हे अगस्त्य मुनि ! त्यो राक्षसको राजा त्यसपछि भगवान्‌को नङको गुफाभित्र पस्यो। हातमा भगवान्‌ले पनि त्यसलाई देख्नुभएन ॥११८-१२१॥

त्यसपछि भगवान् विष्णुले आफ्नो नङभित्र पस्न लागेको त्यस दैत्यलाई देख्नुभयो। त्यसपछि उहाँले पनि आफ्नो शरीरलाई सूक्ष्म बनाउने विचार गर्नुभयो। अनि नृसिंहले पनि आफ्नो शरीरलाई सूक्ष्म तुल्याउनुभयो। उसैको शरीरबराबर बनाएर त्यसलाई आफ्ना तिघ्रामा राख्नुभयो। तुरुन्त त्यसलाई भगवान्‌ले आफ्ना तिघ्रामा राखेर दुनियाँलाई देखाउँदै नङ्ग्राले त्यसको छाती चिर्नुभयो ॥१२२-१२४॥

---

६८. प्राक्षिपच्च शस्त्रास्त्रान्पृथगुद्दिश्य कोटिशः इति न.सं.पु.पाठः।
६९. सर्पश्चानिगिलद्धि लीलया इति न.सं.पु.पाठः।
७०. ततश्च दैत्यराजोऽपि क्रोधेन संववर्द्ध च इति न.सं.पु.पाठः।
७१. तं जहाहीति दैत्यराट् इति न.सं.पु.पाठः।
७२. जहिहीति च स प्रभुः इति न.सं.पु.पाठः।
७३. खड्गकसेद्यतः इति न.सं.पु.पाठः।
७४. नलप्रमाणमङ्गिनम् इति न.सं.पु.पाठः।
७५. न दृष्टवान् तदा मुने इति न.सं.पु.पाठः।

व्यसुस्तत्र महाकायो हिरण्यकशिपुर्मुने। विकीर्णासृगुवाहाऽऽशु क्षितौ पपात तत्तनोः ॥१२५॥
दानवानां महासैन्यं धावति स्म दिशो दश। नृसिंहञ्च व्यसुं दैत्यं समालोक्य च सत्वरम् ॥१२६॥
प्रह्लादश्च महाभक्तो भगवन्तं प्रणम्य च। ययौ हिमालये तप्तुं मुञ्जवत्पर्वतोत्तमे ॥१२७॥
बभूव[७६] पुष्पवृष्टिश्च तस्य चोपरि सन्ततम्[७७]। लाजासारः पुनर्व्योम्नो देवकन्याकरेरितः ॥१२८॥
नेदुर्वाद्यस्वरास्तत्र मृदङ्गपटहोद्भवाः। ननृतुश्चाप्सरोवृन्दा गन्धर्वपतयो जगुः ॥१२९॥
तुष्टुवुर्देवताः सर्वाः प्रदक्षिणापुरस्सरम्[७८]। जय जयेति सिद्धाश्च ह्यवदन्मुनयः पुनः ॥१३०॥
ततो देवर्षयः सिद्धा हिरण्यकलशैस्तदा। अभिषेकं ददुस्तस्मै विश्वधारार्णपूरितैः[७९] ॥१३१॥
नरसिंहस्ततो धीमान्सन्त्यज्य दैत्यविग्रहम्। ययौ हि मुञ्जवच्छैलं क्रीडितुमीश्वराचले ॥१३२॥
एवञ्च विश्वधारायां स्नात्वा देवासुरा मुने। वरं लब्ध्वा मिथो युद्धं बलोन्मत्ताः प्रचक्रिरे[८०] ॥१३३॥
द्वादश्यां रुद्रधारायां स्नाति यो भक्तिपूर्वकम्[८१]। सर्वपापं परित्यज्य शिवलोके महीयते ॥१३४॥

माहात्म्यमेतत्कथितं हि यत्र[८२] तद्विश्वधारातटिनीप्रशंसा।
अन्यापगानां शृणु वच्मि भूयः स्नानेन स्वाभीष्टफलप्रदानाम्[८३] ॥१३५॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे विश्वधारामाहात्म्ये हिरण्यकशिपुवधो नाम पञ्चाशत्तमोऽध्यायः ॥५०॥

---

हे अगस्त्य मुनि! त्यसै ठाउँमा ठूलो शरीर भएको हिरण्यकशिपु मर्‍यो। चिर्दा त्यसको शरीरबाट निस्किएको रगत पृथ्वीमा तुरुन्त बग्यो। नृसिंह र मरेको हिरण्यकशिपुलाई देखेर दानवका सेनाहरू तुरुन्तै दशै दिशातिर भागे। भगवान्का भक्त प्रह्लाद पनि भगवान्लाई प्रणाम गरेर मुञ्जवान् नाम गरेको हिमालय पर्वतमा तपस्या गर्न गए ॥१२५-१२७॥

नृसिंहमाथि बारम्बार फूलका वर्षाहरू भए। आकाशमा रहेका देवताका कन्याको हातबाट लाजाको वृष्टि भयो। मादल, दमाहाबाट पैदा भएका बाजाहरू बजे, अप्सराहरू नाँचे, गन्धर्वहरूले जयगान गरे। सबै देवताहरूले भगवान्लाई परिक्रमा गरेर नमस्कार गरे। सिद्ध र मुनिहरूले जयगान गरे। त्यसपछि देवता र सिद्धहरूले विश्वधारा तीर्थको पानीले भरिएका सुनको कलशले नृसिंह भगवान्लाई अभिषेक दिए ॥१२२-१३१॥

त्यसपछि देवता र सिद्धहरूले विश्वधारा तीर्थको पानीले भरिएका सुनको कलशले नृसिंह भगवान्लाई अभिषेक दिए। हे बुद्धिमान् अगस्त्य मुनि! त्यसपछि नृसिंह भगवान् दैत्यको शरीरलाई त्यसै ठाउँमा छोडेर मुञ्जवान् नाम गरेको शिवजीको पर्वतमा क्रीडा गर्न जानुभयो। हे अगस्त्य मुनि! यसरी देवता र राक्षसहरूले विश्वधारामा स्नान गरेर बलोन्मत्त हुँदै खूबसित युद्ध गरेका थिए। जसले शिवजीमाथि भक्ति राखेर द्वादशीका दिन यहाँ स्नान गर्छ, त्यो सम्पूर्ण पापबाट मुक्त भएर शिवलोकमा ससम्मान बस्न पाउँछ ॥१३१-१३४॥

मैले विश्वधारा नदीको प्रशंसा भएको यो माहात्म्य तपाईंलाई बताएँ। द्विजातिलाई उनीहरूको इच्छाअनुसारको फल दिने अरू नदीहरूको माहात्म्य म फेरि बताउनेछु ॥१३५॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवतखण्डको विश्वधारामाहात्म्यमा हिरण्यकशिपुको वधनामक पचासौं अध्याय पूर्ण भयो।

---

७६. ववर्ष इति न.सं.पु.पाठः।
७७. सन्तते इति न.सं.पु.पाठः।
७८. प्रणम्य च परिक्रमन् इति न.सं.पु.पाठः।
७९. विश्वधारार्णपूरणैः इति न.सं.पु.पाठः।
८०. युद्धञ्चक्रुर्बलोद्धता भृशम् इति न.सं.पु.पाठः।
८१. द्वादश्यां स्नायते येन रुद्रभक्तिसमन्वितः इति न.सं.पु.पाठः।
८२. मया ते इति न.सं.पु.पाठः।
८३. तस्यां द्विजतो भवेद्राद इति न.सं.पु.पाठः।

# एकपञ्चाशत्तमोऽध्यायः

## सितप्रभामहिमा विश्वामित्रस्य तपस्या च

### अगस्त्य उवाच

कोऽसौ गाधिसुतः स्कन्द ! तपश्चक्रे सुदुश्चरे। कस्मिन्स्थाने च सत्तीर्थे पुरा विभो महामनाः ॥१॥
ब्रह्मत्वञ्च कथं लब्धं चाऽन्यवर्णैः सुदुर्लभम्। जायते मयि तच्चित्रं तच्चरित्रं वदस्व मे ॥२॥

### स्कन्द उवाच

आसीद् गाधिश्च धर्मिष्ठः सार्वभौमो महानृपः। तस्य पुत्रो महातेजा विश्वामित्र इति श्रुतः ॥३॥
शान्ते पितरि चक्रे स राज्यं सर्वक्षितौ[1] मुदा। प्रपालयन्प्रजा न्यायैर्दण्डनीतिमहोत्सवैः ॥४॥
नीतिशास्त्रसुवेत्ताऽसौ सर्वधर्मपरायणः। पितृवच्चैव धर्मिष्ठो देवब्राह्मणपूजकः ॥५॥
स कदाचिद्दिने विप्र ! तपस्तप्तुं मनो दधे। वशिष्ठेन तपस्तप्तं पुरा श्रुत्वेति भूरिशः ॥६॥
नारदाच्च समाकर्ण्य ययौ तप्तुं हिमाचले। सन्त्यज्य तृणवद्राज्यं भोग्यानि तत्सुखानि च ॥७॥
सितप्रभानदीं गत्वा विश्वामित्रः सुनिर्जने। तस्यां सम्यक् मुदा सस्नौ यथोक्तं श्रुतिभिर्मुने ॥८॥
ददौ दानानि विप्रेभ्यो यथाविभवविस्तरैः। सन्तर्प्य पितृदेवाँश्च भक्तिपूर्वं तिलोदकैः ॥९॥
हिमवन्तं समारुह्य चैकाकी च शिवात्मके। सितप्रभोद्भवस्याधः[2] स तस्थौ हिरण्यकिंशुके ॥१०॥

---

## अध्याय - ५१

### सितप्रभामहिमा र विश्वामित्रको तपस्या

अगस्त्य मुनिले भन्नुभयो - हे कार्तिक स्वामी ! गाधिका छोरा भनेका को हुन्? उदारमना यिनले अघि कुन स्थानको कुन तीर्थमा कठोर तपस्या गरे ? र अन्य वर्णले प्राप्त गर्न नसक्ने ब्रह्मत्वलाई कसरी प्राप्त गरे ? यस विषयमा मलाई अचम्म लागेको छ, उनको चरित्र बताउनुहोस् ॥१-२॥

कार्तिक स्वामीले भन्नुभयो - पहिले कुनै समयमा अत्यन्त तेजस्वी, धर्मात्मा र चक्रवर्ती गाधि नामक एक राजा थिए। उनका विश्वामित्र नाम गरेका तेजस्वी पुत्र भए। गाधिले छोडेपछि न्यायपूर्वक प्रजाहरूको पालना गर्दै दण्डनीति अनुसार उनले उत्साहपूर्वक सम्पूर्ण पृथ्वीमा शासन गरे। नीतिशास्त्रका ज्ञाता तथा सम्पूर्ण धर्मकर्ममा सिपालु विश्वामित्र आफ्ना बाबुजस्तै धर्मात्मा र देवता तथा ब्राह्मणका पूजक थिए ॥३-५॥

हे अगस्त्य मुनि ! कुनै दिन वसिष्ठले अघि धेरै तपस्या गरेको भन्ने सुनेर विश्वामित्रलाई पनि तपस्या गर्न मन लाग्यो। नारदबाट तपस्याका सम्पूर्ण विधिविधान सुनेर राज्य र त्यसमा गरिने भोग तथा सुखलाई तृण बराबर ठानी उनी तपस्या गर्न हिमालयमा गए ॥३-७॥

हे अगस्त्य मुनि ! त्यसपछि विश्वामित्रले एकान्त स्थलमा रहेको सितप्रभा नाम गरेको गण्डकीनदीमा प्रसन्नतापूर्वक वेदमा बताइएको विधिअनुसार राम्रोसित स्नान गरे। उनले जलतिलले भक्तिपूर्वक पितृ र देवताहरूलाई तर्पण गरेर आफ्नो क्षमता अनुसार ब्राह्मणहरूलाई दान दिए। त्यसपछि उनी हिमालयमा चढेर सितप्रभा नदी उत्पन्न भएको स्थलभन्दा तल रहेको शिवस्वरूप हिरण्यकिंशुक नाम गरेको पर्वतमा बसे ॥८-१०॥

---

१. सर्वांक्षितिम् इति न.सं.पु.पाठः। २. भवाधः इति न.सं.पु.पाठः।

भूत्याऽऽलेपितदेहोऽसौ सुकण्ठलम्बिताक्षकः[३]। लिङ्गञ्च पार्थिवं स्थाप्य समानर्च जितेन्द्रियः ॥११॥
एवं विधिञ्च नित्यं स कृतवान् भक्तिभिर्मुदा। तपश्चकार षण्मासं जजाप पूजनैर्भृशम् ॥१२॥
ततो रुद्रो ह्यलक्ष्यात्मा गगनस्थो महाविभुः। व्याचष्ट वचनं तस्मै दातुं भक्तिमते वरम्[४] ॥१३॥
वरं वरय मत्तस्त्वं भक्त ! गाधिज ! साम्प्रतम्। विद्यते या तव स्वान्ते वाञ्छा ताञ्च ददामि ते ॥१४॥

विश्वामित्र उवाच

तेजोरूपाय देवाय तेजसां पतये नमः। व्यक्तायाव्यक्तरूपाय लक्ष्यालक्ष्याय ते नमः ॥१५॥
विश्वात्मने विरूपाय शङ्कराय नमो नमः। ज्ञानदाय च रुद्राय संसारदाय ते नमः ॥१६॥
यदि ददासि मे देव वरं वरद शङ्कर। वाञ्छाम्यहं वशिष्ठेन तुल्यं पराक्रमं विभो ॥१७॥
ब्राह्मणञ्चैतदङ्गं त्वमिदानीं कुरु शङ्कर। वरमेनञ्च मे देहि तरामि[५] येन संसृतिम् ॥१८॥

अलक्ष्य उवाच

मा वाञ्छय महापारामपाराञ्च द्विजातिताम्। देवानामपि विप्राश्च गरिष्ठाः स्युर्हि गाधिज ॥१९॥
ब्रह्मणश्च मदंशस्य पूर्वोद्भूताः सुताश्च ते। तेभ्यो देवासुराः सर्वे जायन्ते कोटिकोटिशः ॥२०॥
ततो भक्त! जगत्सर्वं स्थावरं जङ्गमन्तथा। अद्यापि च तथा तेभ्यो जायन्ते शृणु कोटिशः[६] ॥२१॥
तस्माद्विप्राः सदा पूज्याः मान्या नृप ! समादृताः[७]। भोजनैश्चैव भोज्यास्ते[८] वन्दनीयाश्च भक्तिभिः ॥२२॥
मन्मूर्त्तयो द्विजाः सर्वे ज्ञानिनोऽज्ञानिनोऽपि वा। तस्मान्मान्याः सदा विप्रा इति स्यान्नृप ! निश्चितम् ॥२३॥
न निन्द्याश्च न दण्ड्याश्च न हन्तव्याः कदाचन। न वदेत् कुत्सितं तेभ्यो मूर्त्तयो मे द्विजातयः ॥२४॥

---

त्यहाँ पुगेपछि उनले शरीरभरि खरानी घसे, घाँटीमा लामो पारेर रुद्राक्षमाला लगाए, जितेन्द्रिय भए र माटको शिवलिङ्ग स्थापना गरी पूजा गरे। यसप्रकार यथाविधि भक्तिपूर्वक अत्यन्त प्रसन्न भएर उनले छ महिनासम्म तपस्या गरे, शिवजीको पूजा गरे र मन्त्रजप गरे। त्यसपछि अचिन्त्यरूप भएका आकाशमा विद्यमान महाप्रभु शिवजीले आफ्ना ती भक्तलाई वर दिनका लागि भन्नुभयो। हे भक्त विश्वामित्र ! तिम्रो मनमा जे इच्छा लागेको छ, त्यो म तिमीलाई दिन्छु, मसित वर माग ॥११-१४॥

विश्वामित्रले भने - तेजको रूप लिने तेजका मालिक महादेवलाई नमस्कार छ, व्यक्त-अव्यक्त तथा लक्ष्य-अ लक्ष्य रूप लिने हजुरलाई नमस्कार छ। विश्वका आत्मा, रूपरहित शङ्करलाई नमस्कार छ। ज्ञानका दाता र संसारको ऐश्वर्यका दाता भगवान् रुद्रलाई नमस्कार छ। यदि हजुर मलाई वर दिनुहुन्छ भने म वसिष्ठको जस्तै पराक्रम चाहन्छु। हे शङ्कर ! मेरो यस क्षत्रिय अङ्गलाई हजुरले ब्राह्मण बनाइदिनुहोस्। यही वर मलाई दिनुहोस् जसबाट म यो संसारबाट पार पाउन सकूँ ॥१५-१८॥

अलक्ष्यले भने - हे विश्वामित्र ! ब्राह्मणहरू भनेका देवताहरूभन्दा पनि श्रेष्ठ हुन्। त्यसैले पार लाग्न नसक्ने अर्थात् अपार ब्राह्मणजाति प्राप्त गर्ने त्यो ठूलो वर नमाग। ब्राह्मणहरू पूर्वसमयमा मेरो अंश ब्रह्माजीबाट उत्पन्न भएका पुत्रहरू हुन्। ती ब्राह्मणहरूबाट करोडौं देवता र असुरहरू पैदा भएका छन्। हे भक्त ! त्यसपछि आजसम्म तिनीहरूबाट करोडौं करोड चर-अचर जगत्को सृष्टि हुँदै आएको छ। त्यसैले हे राजन् ! ब्राह्मणहरू सदा पूज्य, मान्य र आदरणीय हुन्छन्। त्यसैले उनीहरूलाई श्रद्धापूर्वक भोजन गराउनुपर्छ र भक्तिपूर्वक नमस्कार गर्नुपर्छ। हे राजन् ! ज्ञानी-अज्ञानी जे-जस्ता भएता पनि ब्राह्मणहरू साक्षात् मेरा नै मूर्ति हुन्। त्यसैले मेरा अंशरूप ब्राह्मणहरूको सम्मान गर्नुपर्छ, तिरस्कार गर्नुहुँदैन, यो मेरो दृढ निश्चय हो। ब्राह्मणहरूको कहिल्यै पनि निन्दा गर्नुहुँदैन, उनीहरूलाई दण्ड दिनुहुँदैन, मार्नुहुँदैन र गालीगलौज पनि गर्नुहुँदैन, किनभने ब्राह्मणहरू मेरा स्वरूप हुन् ॥१९-२४॥

---

३. रुद्राक्षकण्ठलम्बकः इति न.सं.पु.पाठः।
४. वरं दातुञ्च भक्तिने इति न.सं.पु.पाठः।
५. वरमेतच्च मे देहि तारयै इति न.सं.पु.पाठः।
६. कोटिकोटयः इति न.सं.पु.पाठः।
७. मान्याश्चादृता नृप इति न.सं.पु.पाठः।
८. भोक्तव्यः इति न.सं.पु.पाठः।

सर्वदेवमया विप्राः सर्वधर्ममयास्तथा। सर्वयज्ञमयाश्चैव लोकानाञ्च पितामहाः ॥२५॥
ब्राह्मणेभ्यः समुद्भूतं भुवनं हि चर्तुदश। समुत्पन्ना ततो[९] भूमिः सशैलवनकानना ॥२६॥
तस्माद् भक्त ! रसाः सर्वा ब्राह्मणानाञ्च भूमयः। तेषामनुग्रहाद् भूपा भुञ्जते च रसान् मुदा ॥२७॥
तद्भूमिस्थाः प्रजाक्ष्मापा न निन्द्युर्वाडवान् कदा। भूमिवस्वादिकं तेषां न ग्राह्यमाज्ञया विना[१०] ॥२८॥
यदि लुण्ठन्ति तद्भूमिं दण्डयन्ति च तान् सकृत्[११]। तिष्ठन्ति नरके ते च यावच्चन्द्रदिवाकरौ ॥२९॥
यावन्त्यश्रूणि विप्राणां पतन्ति च महीतले। तद्दुःखजानि राज्ञश्च नरकानि फलं[१२] शृणु ॥३०॥
यावन्तः पांसवो भूमावश्रुविलेपिताश्च ते। पतन्ति नरके तावद्रेणूनां वर्षसंख्यया ॥३१॥
तस्माद्विप्राः सदा सेव्या जनैः कल्याणमिच्छुभिः। यत्किञ्चिदपि तेभ्यो वै दातव्यं ज्ञानसंयुतैः ॥३२॥
ब्राह्मणं यः समाहूय याचमानमकिञ्चनम्। पश्चान्नास्तीति च ब्रूयात्स वै ब्रह्महणः स्मृतः ॥३३॥
क्रोधाद् द्वेषाद् भयाल्लोभाद् ब्राह्मणस्य वदेत्तु यः। मर्मान्तिकं महादोषी ब्रह्महा स प्रकीर्त्तितः ॥३४॥
यश्च विद्याभिमानेन सन्तर्जयति[१३] सद्द्विजम्। उदासीनं सभामध्ये ब्रह्महा स भवेन्नरः ॥३५॥
द्विजानां न्यायसम्प्राप्तवृत्तेर्हरणकर्म तत्[१४]। ब्रह्महत्यासमं ज्ञेयं पातकं नात्र संशयः ॥३६॥
देवद्विजगतां भूमिं पूर्वभुक्तां हरेत्तु यः। प्रणष्टश्चापि कालेन स भवेद् ब्रह्मघातकः ॥३७॥
येन सन्तोषितो विप्रस्त्रैलोक्यं तेन तोषितम्। भक्त्या समर्चितं भूयः पूजितं सचराचरम् ॥३८॥

---

ब्राह्मणहरू सम्पूर्ण देवतामय हुन्छन्, सम्पूर्ण धर्ममय हुन्छन् र सम्पूर्ण यज्ञमय हुन्छन्। यिनीहरू संसारका पितामह नै हुन्। ब्राह्मणहरूबाट नै चौध भुवनको सृष्टि भएको हो र उनीहरूबाट नै पहाड तथा वनले युक्त पृथ्वी उत्पन्न भएकी हुन्। हे भक्त ! त्यसैले सम्पूर्ण धर्ती ब्राह्मणहरूको धाम नै हो। उनीहरूको अनुग्रहले गर्दा राजाहरूले आनन्दसित पृथ्वीको भोग गर्न पाएका छन्। ब्राह्मणहरूको भूमिमा बसेका प्रजा र पृथिवीका रक्षक राजाहरूले कहिल्यै ब्राह्मणहरूको निन्दा गर्नुहुँदैन। हे राजन् ! ब्राह्मणहरूले नदिईकन ब्राह्मणहरूको धनरूपी पृथ्वी राजाले ग्रहण गर्नुहुँदैन। यदि राजाले ब्राह्मणहरूलाई लुटे, उनीहरूलाई एकपटक पनि दण्ड दिए भने तिनीहरू सूर्य र चन्द्रमा रहेसम्म नरकमा गएर बस्छन् ॥२३-२९॥

राजाबाट दुःख पाएका ब्राह्मणहरूका जति थोपा आँसु पृथ्वीतलमा खस्छन् त्यति समयसम्म राजाहरूले पाउने नरकहरूको कष्टका विषयमा बताउँछु, सुन्नुहोस्। उनीहरूका आँसुबाट पृथ्वीमा जति धूलाका कणहरू मुछिनेछन् त्यति धुलाका कणहरूबराबरका वर्षसमम तिनीहरू नरकमा पर्छन्। त्यसैले कल्याण चाहने मानिसहरूले सधैँ ब्राह्मणहरूको सेवा गर्नुपर्छ। तिनीहरूलाई अलिकति भए पनि दान गर्नुपर्छ। जसले मागिरहेको अकिञ्चन ब्राह्मणलाई बोलाएर पछाडि छैन भन्छ त्यसलाई ब्रह्मघाती मानिएको छ। रीस, द्वेष, भय अथवा लोभले ब्राह्मणलाई मर्ममा प्रहार हुने खालको दोष जसले लगाउँछ त्यसलाई ब्रह्मघाती मानिएको छ ॥३०-३४॥

जसले विद्यामा अभिमान गरेर ब्राह्मणलाई सभामा अपमानित गर्छ त्यो व्यक्ति ब्रह्मघाती हुन्छ। न्यायपूर्वक आर्जन गरेको ब्राह्मणको वृत्ति हरण गर्ने कामलाई ब्रह्महत्यातुल्य पाप मानिएको छ, यसमा शङ्का छैन। जसले पहिलेदेखि भोग गर्दै आएको देवता तथा ब्राह्मणको भूभागलाई हरण गर्छ, त्यो व्यक्ति पूर्णयु भएर मरे तापनि ब्रह्मघाती नै हुन्छ। जसले ब्राह्मणलाई खुसी पार्छ, त्यसले स्वर्ग, मर्त्य र पाताललाई प्रसन्न तुल्याउँछ। जसले श्रद्धा र भक्तिपूर्वक ब्राह्मणको पूजा गर्छ त्यसले चराचर जगत्स्वरूप विराट्पुरुषको पूजा गरेको ठहर्छ ॥३५-३८॥

---

९. ततः समुद्भवा इति न.सं.पु.पाठः।
१०. न ग्राह्यं तद्वसु भूमिस्तैर्दत्तञ्च विना नृप इति न.सं.पु.पाठः।
११. यदि लुण्ठन्ति भूमिं तद्दण्डयन्ति ब्राह्मणान् सकृत् इति न.सं.पु.पाठः। १२. तन्नरकफलम् इति न.सं.पु.पाठः।
१३. निस्तेजयति इति न.सं.पु.पाठः।
१४. द्विजवृत्यापहरणे न्यायतः समुपार्जितम् इति न.सं.पु.पाठः।

यैश्च[१५] दत्तं द्विजातिभ्यो भक्त्या स्वल्पं बहूनि वा। लोकान्तरे चाक्षयानि संप्राप्यन्ते च दातृभिः[१६] ॥३९॥
अज्ञानैर्वायुता[१७] विप्रा मम मन्त्रपरायणाः। तेभ्यो दत्तञ्च इयत्कञ्चित्कोटिकोटिगुणं भवेत् ॥४०॥
तन्मुखेषु हुतं भोज्यं तथा दत्तं समर्चितम्। गृह्णाम्यहं हि तत्सर्वं भक्तिपूर्वञ्च गाधिज ॥४१॥
एतज्जन्म च ते वत्स ! क्षत्रियाङ्गसमुद्भवम्। न भवेदिह विप्रत्वं जन्मान्तरे भविष्यति ॥४२॥
नूनं त्वमिह[१७क] राजर्षिर्भवितासि न संशयः। ततो वशिष्ठतुल्यश्च सितप्रभाजलाप्लवात् ॥४३॥

स्कन्द उवाच

इत्यादिश्य वरं तस्मै तेजोरूपो महाविभुः। तिरोदधे तदा व्योम्नि स्वभाभिर्भासयन् दिशः ॥४४॥
ऋषयोऽपि समाजग्मुस्तमभिषेचितुं पुनः। मरीचिप्रमुखाः शीघ्रमीश्वरस्य समाज्ञया ॥४५॥
सितप्रभानदीतीरे तमानीय यथाविधि। अभिषेकं ददुस्तस्मै हिरण्यकलशैस्तदा ॥४६॥
सप्तर्षयो ददुर्भूय आशीर्वादं मुदा हृदा[१८]। भो विश्वामित्र ! राजर्षिर्भवान्भूयाद् द्विजो ध्रुवम्[१९] ॥४७॥
लोकान् स्रष्टुञ्च राजर्षे ! भवान् शक्तो भविष्यति। शापायुधः पुनर्वत्स चास्मत्तुल्यो न संशयः ॥४८॥
ब्रह्मत्वेनाभिषेकञ्च विश्वामित्राय धीमते। दत्त्वा सप्तर्षयः स्थानं स्वं स्वं ययुश्च सिद्धिदाः ॥४९॥
तदादि गाधिजो राजा विप्रतुल्यो ह्यभून्मुने। राजर्षिरिति लोकाश्च तं वदन्ति स्म श्रद्धया[२०] ॥५०॥
विश्वामित्रः ससर्जाशु गोधूमधान्यकन्तथा। नारिकेलं गुवाकञ्च वशिष्ठेन यथा पुरा ॥५१॥
वशिष्ठेन समं भूयस्तपश्चक्रे स गाधिजः। ईर्ष्यया च पुनस्तीव्रं सितप्रभासुसङ्गमे ॥५२॥

---

जसले थोरै वा धेरै ब्राह्मणलाई भक्तिपूर्वक दान गर्छन् तिनीहरूले परलोकमा अक्षय भएर बसेको त्यो वस्तु पाउँछन्। अज्ञानी भए पनि मेरो मन्त्रको जपमा तत्पर ब्राह्मणहरूलाई जुन वस्तु दिइन्छ त्यो करोडौँ गुणा फलदायी हुन्छ ॥३५-४०॥

हे विश्वामित्र ! भक्तिपूर्वक ब्राह्मणहरूलाई गराएको भोजन, दिएको वस्तु र गरेको पूजा जे जति छ, सबै म नै ग्रहण गर्छु। हे बाबु ! तिम्रो यो जन्म क्षत्रियको अङ्गबाट पैदा भएको छ। त्यसैले यस जुनीमा ब्राह्मणत्व हुँदैन,अर्को जुनीमा तिमी ब्राह्मण हुनेछौ। सितप्रभानदीमा स्नान गरेको हुँदा तिमी यस जुनीमा राजर्षि र वसिष्ठजत्तिकै ब्रह्मण हुनेछौ, यसमा शङ्का गर्नुपर्दैन ॥४१-४३॥

कार्तिक स्वामीले भन्नुभयो - हे अगस्त्य मुनि ! तेजस्वरूप महाप्रभु यसरी विश्वामित्रलाई वर दिएर आफ्नो तेजद्वारा सम्पूर्ण दिशालाई उज्यालो पार्दै आकाशमा विलीन हुनुभयो। त्यसपछि मरीचि आदि गरिएका ऋषिहरू पनि भगवान्को निर्देशनअनुसार विश्वामित्रलाई अभिषेक गराउन तुरुन्त आए।उनीहरूले सितप्रभा नदीको तीरमा विश्वामित्रलाई ल्याएर सुनका कलशहरूले विधिपूर्वक अभिषेक गराए ॥४४-४६॥

फेरि सप्तर्षिहरूले प्रशंसा गर्दै आशीर्वाद दिए र भने - हे विश्वामित्र ! तपाईं राजर्षि हुनुभयो, पछि विप्रत्व प्राप्त हुनेछ। हे राजर्षि ! तपाईंले प्रणीहरू सृष्टि गर्न सक्नुहुनेछ, सराप तपाईंको हतियार हुनेछ, तपाईं हामीजस्तै अर्थात् सप्तर्षिमध्येकै एक ऋषि हुनुहुनेछ। यसरी सिद्धिदाता सप्तर्षिहरू विश्वामित्रलाई राजर्षिपदको अभिषेक दिएर आ-आफ्ना स्थानमा गए। त्यसै समयदेखि गाधिका छोरा विश्वामित्र ब्राह्मणतुल्य बने। सबैतिर दुनियाँले उनलाई श्रद्धापूर्वक राजर्षि भन्दछन्। जसरी अघि वसिष्ठले सृष्टि गरेका थिए तयसरी नै विश्वामित्रले दिनहुँ गहुँ, धान, नरिवल र सुपारी सृष्टि गरे। ती विश्वामित्रले (वसिष्ठको) ईर्ष्याले गर्दा सितप्रभा नदीको सङ्गममा गएर वसिष्ठले जस्तै कठोर तपस्या गरे ॥४७-५२॥

---

१५. येन इति न.सं.पु.पाठः।
१६. लोकान्तरे च तेनाशु संप्राप्यन्ते तदक्षयम् इति न.सं.पु.पाठः।
१७. अज्ञानैः संयुता इति न.सं.पु.पाठः।
१७क. इह त्वञ्च हि, इति न.सं.पु.पाठः।
१८. समर्हयत् इति न.सं.पु.पाठः।
१९. हि विप्रता इति न.सं.पु.पाठः।
२०. तस्मै वदन्ति सर्वशः इति न.सं.पु.पाठः।

मुमुक्षवस्ततः सिद्धाः सानुगा मुनयस्तथा। देवाश्चैव सगन्धर्वा दैत्यास्तस्यां समाययुः ॥५३॥
सस्नुर्भक्त्या मुदायुक्ता सितप्रभानदीजले। तदीप्सितानि ते लोकास्तस्यां फलानि लेभिरे[२१] ॥५४॥
ये काङ्क्षन्ति सुखं लोका चेह लोके परत्र च। सितप्रभानदीतोये स्नानं कुर्वन्तु सन्ततम् ॥५५॥
यः संस्नाति महाष्टम्यां तस्यां धीमान् विशेषतः। सर्वपापैर्विनिर्मुक्तो ज्ञानाज्ञानकृतैरपि ॥५६॥
इहलोके सुखं भुक्त्वा सूर्यमण्डलभेदकृत्। उत्तार्य गोत्रजान् सर्वान् लभेत[२२] परमं पदम् ॥५७॥
सितप्रभायाश्च सरिद्वरायाः प्रोक्तं महत्त्वं भवते च धीर[२३]।
प्राप्ता नृपेण द्विजता च तस्यां स्नात्वा द्विजानाञ्च फलं किमूचे ॥५८॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे सितप्रभामाहात्म्ये
विश्वामित्रतपःसिद्धिर्नामैकपञ्चाशत्तमोऽध्यायः ॥५१॥

---

त्यसपछि मोक्षको कामना गर्ने सिद्धपुरुष, मुनिसमुदाय, देवताहरू, गन्धर्व र दैत्यहरू पनि सितप्रभा नदीमा आए। उनीहरूले अत्यन्त प्रसन्न भएर सितप्रभा नदीको जलमा स्नान गरे र आफ्नो अभीष्ट फल पनि प्राप्त गरे। त्यसैले जो मानिस यस लोक तथा परलोकमा सुख चाहन्छन्, तिनीहरूले सितप्रभा नदीको जलमा भक्तिपूर्वक स्नान गर्नुपर्छ। जुन बुद्धिमान् पुरुषले विशेषगरी शरद् ऋतुको महाष्टमीका दिन सितप्रभा नदीमा गएर स्नान गर्छ, त्यो व्यक्ति जानी-नजानी गरेका सम्पूर्ण पापबाट मुक्त हुन्छ। त्यसले यस लोकमा धेरै सुखभोग गरी सम्पूर्ण कुललाई भवसागरबाट तारेर पाञ्चभौतिक शरीर छोडेपछि सूर्यमण्डल भेदन गरी परमपद प्राप्त गर्छ ॥५३-५७॥

हे अगस्त्य मुनि ! मैले सितप्रभा नदीको सङ्गमस्थलको माहात्म्य तपाईंलाइ बताएँ। जुन नदीमा स्नान गरेर विश्वामित्रले ब्रह्मत्व प्राप्त गरेका थिए, त्यहाँ स्नान गरेर ब्राह्मणहरूले आफूलाई इच्छा लागेको फल प्राप्त गर्छन् भन्ने कुराको पनि बयान गरेँ। अब म के भनौँ ? ॥५८॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डको सितप्रभामाहात्म्यमा विश्वामित्रको तपःसिद्धिनामक एकाउन्नौं अध्याय पूर्ण भयो।

---

२१. चालभन् इति न.सं.पु.पाठः।
२२. सर्वगोत्रान् समुत्तार्य स लभेत् इति न.सं.पु.पाठः।
२३. स्तुभ्यञ्च माहात्म्यमलञ्च धीर इति न.सं.पु.पाठः।

# द्विपञ्चाशत्तमोऽध्यायः

रत्नधारामाहात्म्यं सप्ताप्सरोगणतपःसिद्धिश्च

स्कन्द उवाच

रत्नधारा नदी श्रेष्ठा सर्वतीर्थमयी च सा। तस्याञ्च स्नानमात्रेण लभ्यते वाञ्छितं फलम् ॥१॥
यस्याः श्रवणमात्रेण महापापैः प्रमुच्यते। माहात्म्यं शृणु तस्याश्च वच्मि भक्ताय ते मम[1] ॥२॥
दुर्वासाः सत्यवाक् साधुः[2] सत्यसन्धो महातपाः। रत्नधाराजले स्नात्वा षड्वर्गमत्यजत्तटे ॥३॥
तेनैव मुनिना शप्ता पुरा ते चाप्सरोगणाः। तच्छापतो ह्यभूवंस्ताः स्वर्गवेश्या न संशयः ॥४॥
स्थानदोषैः स्वकीयानां मुनेश्चैवाऽपमानतः। प्राप्ताश्च तनवस्ताभिः स्वर्वेश्याः सन्ति सप्त ताः[3] ॥५॥

अगस्त्य उवाच

कथं शप्ताः पुरा स्कन्द ! दुर्वाससाऽप्सरोगणाः। स्वर्वेश्याश्च ततोऽभूवन् कस्माच्चैवाऽपराधतः ॥६॥
आसन्नप्सरसो देव ! सप्त कस्यात्मजा भुवि[4]। श्रोतुमिच्छाम्यहं चैतद् वृत्तान्तं वद मे विभो ॥७॥

स्कन्द उवाच

आसीत्पूर्वं महाराजो धर्मकेतुरिति श्रुतः। सार्वभौमो हि धर्मिष्ठो नीतिशास्त्रविशारदः ॥८॥
तस्य सुता घटोद्भूत सप्ताजायन्त रोचनाः[5]। गुणरूपैश्च ताः सर्वाः संयुताश्चाऽभवन्मुने ॥९॥
युवत्यो रूपसम्पन्नाः सर्वाभरणभूषिताः। परिग्रहैश्च कामार्ताः सर्वलोकविमोहनाः ॥१०॥

---

## अध्याय - ५२

रत्नधारामाहात्म्य र सातवटा अप्सराका गणको तपस्या सिद्धि

कार्तिक स्वामीले भन्नुभयो – सम्पूर्ण तीर्थस्वरूप भएको रत्नधारा नाम गरेको श्रेष्ठ नदी छ। त्यसमा स्नान गर्नाले मात्रै पनि इच्छा लागेको फल प्राप्त हुन्छ। जसको माहात्म्य सुन्नाले ठूला-ठूला पापबाट मुक्ति पाइन्छ, मेरा भक्त तपाईंलाई त्यसको माहात्म्य बताउँछु, सुन्नुहोस् ॥१-२॥

साँचो बोल्ने र साँचो प्रतिज्ञा भएका महातपस्वी दुर्वासा ऋषिले रत्नधाराको जलमा स्नान गरेर त्यसको तटमा काम, क्रोध, लोभ, मद, मोह र मात्सर्य, यी षड्वर्गलाई छोडेका थिए। अघि तिनै ऋषिले ती अप्सराहरूलाई सराप दिएका थिए। तिनको सरापले गर्दा अप्सराहरू स्वर्गका वेश्या भएका हुन्, यसमा शङ्का छैन। आफ्नो स्थानको दोषले र मुनिको सरापले गर्दा अप्सराको शरीर प्राप्त गरेका तिनीहरू स्वर्गका सातवटी वेश्याका रूपमा रहेका छन् ॥१-५॥

अगस्त्य मुनिले भन्नुभयो – हे कार्तिक स्वामी ! अघि अप्सरालाई दुर्वासाले किन सराप दिए ? कुन अपराधले गर्दा तिनीहरू स्वर्गका वेश्या भए ? ती सातवटी कसका छोरीहरू थिए ? यी सबै वृत्तान्त म सुन्न चाहन्छु, मलाई बताउनुहोस् ॥६-७॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! अघि कुनै समयमा चक्रवर्ती धर्मात्मा र नीतिशास्त्रज्ञ धर्मकेतु नाम गरेका राजा थिए। ती राजाका रूप तथा दया, दाक्षिण्य आदि गुणले सम्पन्न सातवटी पुत्रीहरू जन्मिए। ती युवतीहरू अत्यन्त रूपसी थिए। तिनीहरूले सम्पूर्ण गहना लगाएका थिए, सौन्दर्यका सामग्रीको परिग्रहले गर्दा ती अति नै कामुक थिए र सबै लोकलाई मोहित तुल्याउँथे ॥८-१०॥

---

१. ते मम भक्तिने इति न.सं.पु.पाठः।
२. सत्यवासाश्च इति न.सं.पु.पाठः।
३. प्राप्ताश्च विग्रहास्ताभिः स्वर्वेश्याऽद्यापि सप्तकाः इति न.सं.पु.पाठः।
४. ताश्चासरोगणा देव ! कस्यात्मजाश्च सप्तकाः इति न.सं.पु.पाठः।
५. सप्तकाः समजीजनन् इति न.सं.पु.पाठः।

वैशाखशुक्लपक्षे ताश्चैकादश्यां महातिथौ[६] । समाययुश्च संस्नातुं रत्नधाराजले मुने ॥११॥
तस्यास्तीरे मुनिश्रेष्ठं दुर्वाससं महामुनिम् । ददृशुर्नृपकन्यास्तास्तस्यां स्नातुं समागताः[७] ॥१२॥
स्नात्वा योगासनस्थं तं भूत्या लिप्तकलेवरम् । धारयन्तञ्च रुद्राक्षं[८] त्रिपुण्ड्रकमहोज्ज्वलम् ॥१३॥
लिङ्गं च पार्थिवं कृत्वा[९] पुरो देशे मुदाऽन्वितम् । पूजयन्तं मुहुर्भक्त्या जपन्तमृजुविग्रहम् ॥१४॥
चिन्तयन्तं महेशानमक्षमालाकरोज्ज्वलम् । भासयन्तं दिशो भाभिः स्वभाभिः[१०] सूर्यसन्निभम् ॥१५॥
दुर्वाससं मरुद्भक्ष्यं षड्वर्गैः प्रविवर्जितम् । शापायुधं तपःक्लेशं भगवन्तमिवाऽपरम्[११] ॥१६॥
विवस्त्रास्तास्ततः सस्नू रत्नधाराजलोत्तमे । पश्यन्त्योऽपि[१२] मुनिं दम्भात्तमवमन्य कन्यकाः ॥१७॥
अतिवृद्धस्तथैकाकी चाऽसौ मुनिरदृश्यत । जुगुप्सते च निर्वस्त्राः हसिष्यति कथं पुनः[१३] ॥१८॥
कृत्वेति कन्यकास्तस्यां जलक्रीडां प्रचक्रिरे । परित्यज्य च वासांसि वदन्त्यस्तत्तटे मिथः ॥१९॥
मुनिश्रेष्ठश्च दुर्वासास्तासां चेष्टां ददर्श च । विवस्त्राश्चैव निर्लज्जाः प्रक्रीडन्त्यो जले मुदा ॥२०॥
स्वस्याऽवहेलनं कृत्वा क्रीडितञ्च नदीजले[१४] । स ताभिरिति सम्प्रेक्ष्य दुर्वासाः सुचुकोप च ॥२१॥
कोपात्मा धीर दुर्वासास्ताभ्यः शापं ददौ भृशम् । विबुधैरप्यसह्यः स महान् शापः स्मयप्रदः[१५] ॥२२॥

हे मुनि ! वैशाख शुक्ल पक्षको शिवजीको तिथि एकादशीका दिन तिनीहरू रत्नधारा नदीको जलमा स्नान गर्न आए । त्यस नदीमा स्नान गर्न आएका राजाका ती छोरीहरूले त्यसै नदीको तीरमा बसेका महामुनि दुर्वासालाई देखे । दुर्वासा स्नान गरेर योगासनमा बसेका थिए, जिउभरि खरानी घसेका थियो, रुद्राक्ष लगाएका थिए, त्रिपुण्ड्रले गर्दा अत्यन्त उज्याला देखिन्थे । सिधा शरीर भएको माटाको शिवलिङ्ग अगाडि स्थापना गरेर अत्यन्त हर्षका साथ भक्तिपूर्वक त्यसलाई पूजा गरिरहेका थिए । हातमा जपमाला लिएका, महेश्वरको चिन्तन गरिरहेका, आफ्ना तेजले चारै दिशालाई प्रकाशित तुल्याइरहेका सूर्यजस्ता उनी देखिन्थे । उनी हावा खाइरहेका थिए, काम, क्रोध आदि षडवर्गबाट रहित भएका दुर्वासाले शाप नाम गरेको अस्त्र लिएका थिए अर्थात् उनमा विपरीत आचरण गर्नेलाई सराप दिने शक्ति थियो । कठोर तपस्यामा निमग्न दुर्वासा दोस्रा भगवान्जस्ता देखिन्थे ॥११-१६॥

त्यस्ता ऋषिलाई अगाडि देख्दादेख्दै पनि ती कन्याहरूले बडो अभिमानका साथ सम्पूर्ण लुगा फुकालेर लाजै नमानी रत्नधाराको पवित्र जलमा निर्वस्त्र स्नान गरे । यी ऋषि अत्यन्त वृद्ध छन्, एक्लै देखिन्छन्, यिनले नाङ्गै नुहाइरहेका हामीलाई के गिज्याउलान् र के भनेर उपहास गर्लान् र भन्ने ठानी ती सुन्दरीहरू निर्वस्त्र नुहाइरहेका थिए ॥१७-१९॥

रत्नधारा नदीको तटमा आपसमा यस्तो कुराकानी गरेर आफ्ना सबै कपडाहरू फाली ती केटीहरू जलक्रीडा गर्न थाले । मुनिश्रेष्ठ दुर्वासाले ती सातवटी राजकन्याका अश्लील चेष्टाहरूसँगै तिनले नदीको जलमा निर्लज्ज भई आनन्दपूर्वक जलक्रीडा गरिरहेको देख्नुभयो नाङ्गै भएर लाजै नमानीकन आफ्नो अपमान गर्दै पानीमा खेलिरहेका ती केटीहरूको चरित्र देखेर मुनिश्रेष्ठ दुर्वासा अत्यन्त रिसाउनुभयो । त्यसपछि रीसका मूर्ति दुर्वासा ऋषिले देवताहरूले पनि सहन गर्न नसक्ने र अचम्म लाग्ने ठूलो सराप ती केटीहरूलाई दिनुभयो ॥२०-२२॥

६. भवे इति न.सं.पु.पाठः ।
७. गतेषु वै इति न.सं.पु.पाठः ।
८. रुद्राक्षान् इति न.सं.पु.पाठः ।
९. स्थाप्य इति न.सं.पु.पाठः ।
१०. स्वकीयैः इति न.सं.पु.पाठः ।
११. द्वितीयभगवानिव इति न.सं.पु.पाठः ।
१२. पश्यन्त्यपि इति न.सं.पु.पाठः ।
१३. किं जुगुप्सति निर्वस्त्राः हसिष्यति मिथः पुनः इति न.सं.पु.पाठः ।
१४. संक्रीडितञ्च तज्जले इति न.सं.पु.पाठः ।
१५. विबुधैरप्यसह्यं तद्यच्छापं महदद्भुतम् इति न.सं.पु.पाठः ।

दुर्वासा उवाच

भो भो कन्याः सुदुर्लज्जा गर्विण्यो रूपयौवनैः। यूयं मे कृतवत्योऽद्य महदद्भुतहेलनम् ॥२३॥
व्रीडां चैव परित्यज्य भूत्वा निर्वसना ध्रुवम्। चक्रुर्यूयं जलक्रीडामवमत्य च मां भृशम् ॥२४॥
यस्मात्क्रीडथ यूयं हि कृत्वावहेलनं मम[१६]। गणिका इव दौःशील्याद् वेश्या भवत सप्त हि[१७] ॥२५॥
वसुभिर्ये च गर्वन्ति रूपसौन्दर्ययौवनैः। गर्वतस्ते पतिष्यन्ति तैस्त्यक्ताश्च न संशयः ॥२६॥
रजोगुणैश्च ये केचिद्विराजन्ते सुखैषिणः। तेषाञ्चैव बुद्धिभ्रंशो भविष्यत्यविवेकिनाम् ॥२७॥
निर्दयाश्च जना ये तु घ्नन्ति पशून्समात्मनः। तेषां देहाः पतिष्यन्ति चाऽज्ञानात् कामतो मुहुः[१८] ॥२८॥
ये विप्रानवमन्यन्ते[१९] श्रिया निमीलितेक्षणाः[२०]। तेऽपि चाऽऽशु पतिष्यन्ति सर्वदेवमयान्भृशम् ॥२९॥
ये हेलयन्ति देवांश्च भुक्तिमुक्तिफलप्रदान्। तेऽपि सत्यं पतिष्यन्ति परिवारैः समं तदा ॥३०॥
हेलयन्ति च ये तीर्थमवधूतं तपस्विनः। पतिष्यन्ति जनास्ते च निन्दकाश्च[२१] विशेषतः ॥३१॥
अतो मामवमन्याऽद्य विवस्त्राः क्रीडिता जले। भवत[२२] गणिकाः सप्त यूयञ्च कन्यका ध्रुवम् ॥३२॥

स्कन्द उवाच

ततो दुर्वाससः शापं श्रुत्वाऽत्र सप्त कन्यकाः। विह्वलाङ्ग्यो ययुर्गेहं कम्पिताङ्ग्यो मुहुर्मुहुः ॥३३॥
ता वै निवेदयन्ति स्म स्वपित्रे धर्मकेतवे। यो दत्तो मुनिना शापः स्वात्मभ्यश्च तपस्विना ॥३४॥
धर्मकेतुर्नृपोऽप्याऽऽशु धर्षितोऽभूत्तदा भृशम्। श्रुत्वा दुर्वाससः शापं स्वभासा भासयन्दिशः ॥३५॥
श्रुत्वा दुर्वाससः शापं दुहितृणाञ्च वेपथुम्। दृष्ट्वा दुःखातुरो राजा धर्मकेतुर्व्यचिन्तयत् ॥३६॥

---

दुर्वासा ऋषिले ती कन्याहरूलाई सराप दिँदै भन्नुभयो – रूप र यौवनले मातेका र लाज नभएका हे केटी हो ! तिमीहरूले आज मेरो आश्चर्यजनक रूपले अपमान गर्‍यौ। तिमीहरूले मेरो अत्यन्त अपमान गरेर लाज छोडी निर्वस्त्र भएर जलक्रीडा गर्‍यौ। वेश्याहरूले जस्तै तिमीहरूले जुन यहाँ आनन्दसित क्रीडा गर्‍यौ र मेरो अपमान गर्‍यौ त्यसै अपमानका कारणले तिमीहरू सातवटी वेश्या भए ॥२०-२५॥

सम्पत्ति, रूप, सौन्दर्य र यौवनबाट जो मानिस मात्तिन्छ ती तीन कुराहरूले छोडेपछि ती मानिस पतित हुन्छन्। जुन प्राणीहरू सुखको इच्छाले रजोगुणयुक्त पदार्थको सेवन गर्छन् त्यस्ता अविवेकी व्यक्तिहरूको बुद्धि चाँडै नाश हुन्छ। जसले निर्दय भएर समान आत्मा भएका पशुहरूलाई नजानीकन वा लोभले मार्छन् तिनीहरूको शरीर पतित हुन्छ। सम्पत्तिको मदले अन्धा भएका जुन मानिसहरू सम्पूर्ण देवताको स्वरूप भएका ब्राह्मणलाई अपमान गर्छन् त्यस्ता व्यक्तिहरू पनि तुरुन्त नरकमा पर्छन्। जसले भुक्ति र मुक्तिको फल दिने देवताहरूको अवहेलना गर्छन् तिनीहरू पनि आफ्ना परिवारका साथ नरकमा जान्छन्। जसले तीर्थ, अवधूत र तपस्वीको हेला गर्छन्, विशेष गरी अनिन्द्य व्यक्तिको निन्दा गर्छन्, तिनीहरू पनि अधोगतिमा प्राप्त हुन्छन्। यसैले हे केटी हो ! आज तिमीहरूले मलाई अपमान गर्दै नाङ्गै भएर यस पानीमा जुन क्रीडा गर्‍यौ त्यसको पापले तिमीहरू सातवटीले नै वेश्या हुनुपरोस् ॥२३-३२॥

कार्तिक स्वामीले भन्नुभयो – दुर्वासाको सराप सुनेपछि ती सातैवटी कन्याहरू विह्वल भएर थर्थरी काँप्दै घरतिर गए। त्यसपछि उनीहरूले तपस्वी दुर्वासाद्वारा आफूलाई दिएको सरापको वृत्तान्त आफ्ना बाबु धर्मकेतुसँग निवेदन गरे। चारैतिर आफ्नो कीर्ति फैलिएका राजा धर्मकेतु दुर्वासाले दिएको सराप सुनेर आश्चर्यमा परे। छोरीहरूलाई दिएको दुर्वासाको सराप सुनेर र उनीहरूको कम्पनलाई देखेर धर्मकेतु राजा अत्यन्त दुःखित हुँदै चिन्तन गर्न लागे ॥३३-३६॥

---

१६. माञ्चात्रापहेलनं सुखम् इति न.सं.पु.पाठः।
१७. सप्तवेश्या भवन्तु च इति न.सं.पु.पाठः।
१८. तद्विग्रहाः पतिष्यन्ति आज्ञानाल्लालसैर्मुहुः इति न.सं.पु.पाठः।
१९. अवमानन्ति ये विप्रान् इति न.सं.पु.पाठः।
२०. श्रीमन्निमिलितेक्षणाः इति न.सं.पु.पाठः।
२१. तन्निन्दका इति न.सं.पु.पाठः।
२२. भवन्तु इति न.सं.पु.पाठः।

जगामाऽऽशु मुनिर्यत्र दुहितृभिः समं मुने। दुर्वाससं मुनिं राजा रत्नधारातटे स्थितम् ॥३७॥
जपध्यानरतं भासा भासयन्तं दिशः समाः[२३]। दृष्ट्वा मुनिवरं राजा त्रस्तोऽभूच्च सवेपथुः ॥३८॥
तदन्तिकञ्च गन्तुं वा न शक्तः खलु कोऽपि वा। ततश्चिन्ताकुलो राजा बभूव मुनिकोपतः[२४] ॥३९॥
दह्यते मे तनुस्तस्य[२५] समीपं चेद् व्रजाम्यहम्। तथापि न न गन्तव्यं प्रणिपाताय सन्मुनेः[२६] ॥४०॥
कोपश्च महतः शान्तः प्रणिपातेन नान्यथा। समाधायेति सः स्वान्ते धर्मकेतुस्तदन्तिकम् ॥४१॥
जगाम च शनैः राजा दुहितृभिः समं मुने। गत्वा तदन्तिकं राजा ननाम तं मुहुर्मुहुः ॥४२॥
दण्डवत्पातयित्वाऽङ्गं चकार श्रद्धया स्तवम्[२७]।

धर्मकेतुरुवाच

नमो ब्राह्मणदेवाय ब्रह्मात्मने तपस्विने ॥४३॥
दुर्वाससे ऋगुक्ताय सत्यवाचे नमो नमः। यस्य कोपेन सम्पूर्णं ब्रह्माण्डं भस्मसाद् भवेत्[२८] ॥४४॥
सुराश्चाऽपि सहन्ते न यस्य कोपं सुदारुणम्। सुरासुरनरैः सर्वैर्योऽर्च्चितः सततं मुदा ॥४५॥
तस्मै नमो मुनीशाय नमस्ते ब्रह्मवर्चसे। क्षमस्व मेऽपराधं त्वं दुहितॄणां तथैव च ॥४६॥
रुषं संहर विप्रेश ! चैतासु मयि चाऽधुना। अज्ञेन विहितं चाऽऽगो नाऽपराधो हि गण्यते[२९] ॥४७॥
स्त्रीणां विशेषतो भूयः तस्मात्[३०] क्षमस्व नो विभो। उपायो मे स वक्तव्यः[३१] शाङ्कर ! किङ्कराय ते ॥४८॥
आसाञ्च मे दुहितॄणां येन शापो विनश्यति।

---

आफ्ना छोरीहरूलाई लिएर रत्नधारा नदीको तटमा बसेका दुर्वासा मुनिलाई भेट्न गए। आफ्नो कान्तिले चारै दिशा उज्यालो पार्दै जप तथा ध्यान गरिरहेका ऋषिलाई देखेर राजा डराए र काँपे। दुर्वासाको रीसले गर्दा कोही पनि तपस्वी दुर्वासाको नजिक जान सक्दैनन्, म कसरी जाऊँ भनेर धर्मकेतु चिन्ताग्रस्त भए ॥३७-३९॥

त्यसपछि राजा यदि म उनको नजिकै गएँ भने मेरो शरीर अवश्य खरानी हुन्छ। तैपनि महात्मासित झुकेर अनुरोध गर्न जानै पर्‍यो। ठूलाको रीस नम्रताबाट नै शान्त हुन्छ अन्यथा हुँदैन भन्ने मनमा निश्चय गरेर धर्मकेतु राजा आफ्ना छोरीहरूलाई साथमा लिएर दुर्वासा ऋषिकै नजिक गए। उनको नजिकै गएर आफ्ना सम्पूर्ण अङ्गहरू झुकाएर ऋषिलाई धर्मकेतुले बारम्बार दण्डवत् प्रणाम गरेर भक्तिपूर्वक स्तुति गरे ॥३८-४२½॥

धर्मकेतुले भने - ब्रह्म नै आत्मा भएका तपस्वी ब्राह्मणदेवलाई नमस्कार छ। ऋचाहरूद्वारा प्रशंसा गरिएका सत्यवादी दुर्वासालाई बारम्बार नमस्कार छ। जसको रीसले सम्पूर्ण ब्रह्माण्ड नै भस्म हुन सक्छ, देवताहरूले पनि जसको कठोर रीसलाई सहन सक्दैनन्, देवता, राक्षस र मानिसले अत्यन्त प्रसन्न भएर जसको पूजा गर्छन् त्यस्ता ब्रह्मतेज भएका मुनिश्रेष्ठ हजुरलाई नमस्कार छ। हे ब्राह्मणश्रेष्ठ दुर्वासा ! मेरा छोरीहरूको अपराधलाई क्षमा गरिदिनुहोस्, यिनीहरू र ममाथि भएको क्रोध हटाउनुहोस्। हे ब्राह्मण ! नजान्नेले गरेका, विशेष गरी स्त्रीजातिको अपराधलाई गनिँदैन। यसैले हामीहरूलाई क्षमा गर्नुहोस्। हे शङ्करका अवतार ! यी मेरा छोरीहरूको जे गर्दा सराप नाश हुन्छ त्यो उपाय म सेवकलाई बताउनुहोस् ॥४३-४८½॥

---

२३. जपन्तं ध्यायमानन्तं स्वभासा भासयन्दिशः इति न.सं.पु.पाठः।
२४. तापसो रुषा इति न.सं.पु.पाठः।
२५. दह्यति मे तनुं तस्य इति न.सं.पु.पाठः।
२६. महात्मनः इति न.सं.पु.पाठः।
२७. स्तोत्रञ्चकार भक्तिभिः इति न.सं.पु.पाठः।
२८. भस्मितुं क्षमः इति न.सं.पु.पाठः।
२९. अज्ञकृतामसो ब्रह्मन्नपराधो न गण्यते इति न.सं.पु.पाठः।
३०. उपायं मे च वक्तव्यं ते किङ्कराय शङ्कर, इति न.सं.पु.पाठः।
३१. उपायं मे च वक्तव्यम् इति न.सं.पु.पाठः।

दुर्वासा उवाच

आभिः स्नानं कृतं नद्यामवमन्य च मामतः ॥४९॥
दत्तः शापः[३२] विवासोभ्यस्ताभ्यो रुषा नृपोत्तम। यस्मै दत्तो मया[३३] शापो यस्मै चाऽऽशीस्तथैव च ॥५०॥
न विनश्यति तत्सर्वं धर्मकेतो ! कदापि च। गृहस्थानामपीहार्य ! शापो[३४] द्विजन्मिनाञ्च यत् ॥५१॥
कदापि न भवेन्मिथ्या तपस्विनां कुतो वद। कस्मैचिच्च[३५] रुषा विप्रः शापं ददाति चाऽऽगसः ॥५२॥
तेन प्रदह्यते तस्य सप्तान्वयः परो नृप। सोढव्यानि द्विजातीनां सहस्रागांसि वै ततः ॥५३॥
आत्मनः पुत्रपौत्राणां हिताय च सदा बुधैः। तस्मादिमां सदा ब्रूयात्[३६] वाचमात्मविशुद्धये ॥५४॥
मेऽपराधं क्षमस्वेति ब्रह्मन् बद्धवाञ्जलिं बुधः। एवं चेन्नैष्ठिकीं नित्यक्रियां जानीहि धीमताम् ॥५५॥
भद्रञ्चैवात्मनस्तेषामन्यथा विपदोऽनिशम्। आसाञ्च त्रिदिवप्राप्तावुपायः कोऽपि विद्यते[३७] ॥५६॥
भक्त तवाऽधुनास्नेहाद्वक्ष्याम्यहं शृणुष्व तत्। रत्नधारानदीतीरे स्नात्वा सभक्ति पार्थिव ॥५७॥
उमामहेश्वरं देवं पूजयित्वा दिवानिशम्[३८]। ततः स्तुत्वा वरं प्रार्थ्य परिक्रम्य प्रणम्य च ॥५८॥
भोजयित्वा ततो[३९] विप्रान् शिवमुद्दिश्य दक्षिणाम्। दत्त्वा चैतां तनुं[४०] त्यक्त्वा शिवव्रतपरायणाः ॥५९॥
मुदा गच्छन्ति ताः स्वर्गं गणिकाश्च सुरप्रियाः।

---

दुर्वासाले भने – हे राजन् ! यी केटीहरूले मलाई अपमान गरेर नाङ्गै यस नदीमा स्नान गरे। त्यसै रीसले मैले यिनीहरूलाई सराप दिएँ। हे धर्मकेतु ! म जसलाई सराप दिन्छु अथवा आशीर्वाद दिन्छु, त्यसको नाश कहिल्यै हुँदैन। हे आर्य ! गृहस्थी र द्विजातिहरूले दिएको सराप त मिथ्या हुँदैन भने तपस्वीले दिएको सराप कसरी मिथ्या हुन्छ ? हे राजन् ! कुनै अवस्थामा अपराध गरेको कारणले रिसाएर ब्राह्मणले सराप दियो भने त्यसले अगाडिको सात कुललाई भस्म गरिदिन्छ। त्यसैले आफ्नो छोरा–नाति आदिको हित चाहने व्यक्तिले ब्राह्मणहरूका हजारौं अपराधलाई पनि सहनुपर्छ ॥४९–५३॥

त्यसैले उनीहरूसित हे ब्रह्मन् ! मैले आत्मादेखि नै गरेको अपराध क्षमा गर्नुहोस् भनेर हात जोडेर भन्नुपर्छ। बुद्धिमान् मानिसहरूले निष्ठापूर्वक गर्नुपर्ने यो नित्य क्रिया हो भनेर ठान, त्यसो गर्दा आफूलाई कल्याण हुन्छ, होइन भने बारम्बार विपत्ति आइलाग्छ। यी केटीहरूको स्वर्गमा स्थान प्राप्त हुने एउटा बाटो छ। हे भक्त ! तिम्रो स्नेहले गर्दा त्यो उपाय म बताउँछु, सुन ॥४९–५६॥

हे राजन् ! रत्नधारा नदीको तीरमा स्नान गरेर दिनरात उमामहेश्वरको पूजा गरी स्तुति गर्नुपर्छ। त्यसपछि परिक्रमा गर्दै प्रार्थना गरेर ब्राह्मणहरूलाई भोजन गराई शिवजीस्वरूप मानेर दक्षिणा दिनुपर्छ। त्यसपछि उमाको व्रत गरेर शरीर त्याग गरेपछि यी देवताका प्रिय वेश्याहरू पनि आनन्दसाथ स्वर्ग जान पाउँछन् ॥५७–५९½॥

---

३२. दत्तं शापम् इति न.सं.पु.पाठः।
३३. यद्दत्तञ्च इति न.सं.पु.पाठः।
३४. शापम् इति न.सं.पु.पाठः।
३५. कदाचिच्च इति न.सं.पु.पाठः।
३६. वाच्यम् इति न.सं.पु.पाठः।
३७. आसञ्च त्रिदिवस्थानमुपायः किञ्चिदस्ति च इति न.सं.पु.पाठः।
३८. चाहोरात्रं समर्चयन् इति न.सं.पु.पाठः।
३९. भोज्यान्नं भोजयन् इति न.सं.पु.पाठः।
४०. तत एतत्तनुम् इति न.सं.पु.पाठः।

स्कन्द उवाच

इत्युपदिश्य ताभ्यश्च दुर्वासाः स महामुनिः ॥६०॥
ययौ हैमालयं शृङ्गं तपस्तप्तुं पुनर्मुने। धर्मकेतुर्नृपश्चाऽपि ताभिः समं ययौ गृहम् ॥६१॥
कारयित्वा व्रतं प्रोक्तं मुनिना हितकारकम्। ततो देहान्तरे ताभिः प्रलब्धः स्वर्ग उत्तमः[४१] ॥६२॥
रत्नधाराजले स्नानाद् रूपसौन्दर्यभूषिताः[४२]। गणिकास्तत्र चाऽभूवन् स्वैरिण्यः शक्रवल्लभाः[४३] ॥६३॥
देवप्रियाश्च रूपाढ्यास्ता एव चाप्सरोगणाः। रत्नधाराजले स्नानाद् रूपसौन्दर्यसंयुताः ॥६४॥
अद्यापि ताः प्रतिष्ठन्ति युगे स्त्रियो दिवि द्विज। घृताची मेनका रम्भा उर्वशी च तिलोत्तमा ॥६५॥
सुकेशी मञ्जुघोषाख्या एता अप्सरसो हि ताः[४४]।

वाञ्छन्ति ये रम्यतमं स्वरूपं कुर्वन्तु तस्यां सलिलाप्लवाँश्च।
सर्वैनसा मुक्तशरीरपूता यास्यन्ति नाकं हि मुदाऽन्वितास्ते ॥६६॥

इति श्रीस्कन्दपुराणे हिमवतखण्डे रत्नधारामाहात्म्ये सप्ताप्सरोगणसिद्धिर्नाम
द्विपञ्चाशत्तमोऽध्यायः ॥५२॥

---

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! तिनीहरूलाई इति उपदेश दिएर महामुनि दुर्वासा फेरि तपस्या गर्न हिमालयको शिखरमा जानुभयो। मुनिले दिएको उपदेश अनुसार छोरीहरूलाई व्रत गराएर धर्मकेतु राजा तिनीहरूलाई साथै लिएर घर गए। रत्नधारा जलमा नुहाएको हुँदा रूप र सौन्दर्यले युक्त ती कन्याहरूले शरीर छोडेपछि उत्तम स्वर्ग प्राप्त गरे। तिनै सुन्दरी गणिकाहरू स्वर्गमा गएपछि स्वर्वेश्या बने। तिनीहरू भनेका इन्द्र तथा देवताका प्रिय पात्र अप्सराहरू हुन् ॥६०-६३॥

हे अगस्त्य मुनि ! रत्नधारा नदीको जलमा स्नान गर्नाले रूप र सौन्दर्यले युक्त भएका ती अप्सराहरू आज पनि स्वर्गमा बसिरहेका छन्। घृताची, मेनका, रम्भा, उर्वशी, तिलोत्तमा, सुकेशी र मञ्जुघोषा नाम गरेका यी अप्सराहरू हुन् ॥६४-६५॥

जसले सुन्दर रूपको चाहना गर्छ ती व्यक्तिले रत्नधारा नाम गरेको नदीको जलमा धेरै पटक स्नान गर्नुपर्छ। त्यस नदीमा स्नान गर्ने व्यक्ति सम्पूर्ण पापबाट मुक्त भई शरीर पवित्र गराएर आनन्दसित स्वर्गमा जान्छन् ॥६६॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवतखण्डको रत्नधारामाहात्म्यमा सातवटा अप्सराको तपःसिद्धिनामक बाउन्नौं अध्याय पूर्ण भयो।

---

४१. प्रलब्धं स्वर्गमुत्तमम् इति न.सं.पु.पाठः।
४२. रूपसौन्दर्यदेहिनः इति न.सं.पु.पाठः।
४३. चाभूवन्स्वैरिण्यो वज्रिणस्तथा इति न.सं.पु.पाठः।
४४. स्युरप्सरोगणाः इति न.सं.पु.पाठः।

# त्रिपञ्चाशत्तमोऽध्यायः

दुग्धप्रभामहिमा

अगस्त्य उवाच

भगवन्मे त्वया प्रोक्ता दुग्धप्रभेति या पुरा। तस्याश्चैव हि माहात्म्यं श्रोतुमिच्छाम्यहं विभो ॥१॥
केन तप्तं पुरा तस्यां तप्त्वा लब्धञ्च किं प्रभो। जलाप्लवफलं तस्याश्चैतन्मे ब्रूहि साम्प्रतम् ॥२॥

स्कन्द उवाच

आसीत्कश्यपसूनुश्च तारको नाम विश्रुतः। स कदाचिद्दिने धीमन् ! स्नातुं तस्यां गतोऽसुरः ॥३॥
दुग्धप्रभानदीं पुण्यां प्रेक्ष्य स हर्षितोऽसुरः। तस्यां सस्नौ मुदा युक्तो ददौ दानं ततः पुनः ॥४॥
तप्तुमियेष देत्येशस्तत्तीरे हिमभूषिते। तत्राऽपश्यन्मुनिवरं प्रचेतसं तपःस्थितम् ॥५॥
प्रणम्य शिरसा दैत्यस्तं समर्चितवान्मुदा। तदाज्ञाञ्च समादाय दुग्धप्रभाजलाप्लुतः ॥६॥
ततः स्नात्वा जले नद्या तप्तवान् धातुसानुनि[1]। ब्रह्माणञ्च समाराध्य भक्तिपूर्वञ्च तारकः ॥७॥
सहस्राब्दं मुदा व्याप्य जजाप मनुमुत्तमम्। कायमनोवचोभिश्च भक्त्या चैव स्तुवन् मुने[2] ॥८॥
ततश्च भगवान् ब्रह्मा नदीक्षेत्रे हिमालये। आविर्भूतो वरं दातुं तारकाय तपस्विने ॥९॥

ब्रह्मोवाच

अहोऽद्भुतं तपस्तप्तं सुकठोरं त्वया सुत। निर्जनेऽत्र तुषाराद्रौ मृदुदेहेन भीषणम्[3] ॥१०॥
सहस्राब्दं तपस्तप्तं त्वया वत्स ! सुनिश्चितम्। भक्त्या मां हि समाराध्य न देयं नास्ति तेऽधुना ॥११॥
वरं वरय वत्साऽऽशु विद्यते हृदि ते च यत्। अदेयमपि तत्सर्वं दास्याम्यहं न संशयः ॥१२॥

---

## अध्याय - ५३

दुग्धप्रभा (सेतीगण्डकी)को महिमा

अगस्त्यले भन्नुभयो – हे प्रभु ! हजुरले अघि दुग्धप्रभाको विषयमा बताउनुभएको थियो। तिनको माहात्म्य म सुन्न चाहन्छु। दुग्धप्रभामा अघि कसले तपस्या गऱ्यो र के फल पायो ? त्यस नदीमा स्नान गर्नाले के फल प्राप्त हुन्छ ? त्यो पनि मलाई हजुरले बताइदिनुहोस् ॥१-२॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! कश्यप ऋषिको तारक नाम गरेको राक्षसजातिको छोरो थियो। एकदिन त्यो राक्षस नुहाउन दुग्धप्रभामा गयो। दुग्धप्रभा नाम गरेको नदीलाई देखेर त्यो राक्षस अत्यन्त खुसी भयो र त्यस नदीमा उसले आनन्दसित स्नान गरी दान दियो। त्यस दैत्यलाई हिउँले ढाकिएको दुग्धप्रभा नदीको तीरमा तपस्या गर्ने इच्छा भयो। त्यसले तपस्यामा तत्पर भएका प्रचेता मुनिलाई त्यहाँ देख्यो। त्यस दैत्यले ती मुनिलाई श्रद्धापूर्वक शिरले प्रणाम गऱ्यो। त्यसपछि ती मुनिको आज्ञाअनुसार दुग्धप्रभानदीमा स्नान गरेर धातुसानु नाम गरेको टाकुरामा गई तपस्या गर्न थाल्यो। त्यस तारक दैत्यले भक्तिपूर्वक ब्राह्माजीको आराधना गऱ्यो ॥३-७॥

हे अगस्तय मुनि ! त्यस दैत्यले शरीर, मन र वचनले भक्तिपूर्वक स्तुति गर्दै एक हजार वर्षसम्म आनन्दसित भगवान् ब्रह्माजीको उत्तम मन्त्र जप्यो। त्यसपछि हिमालयको नदी झरेको ठाउँमा तपस्वी तारक दैत्यलाई वर दिनका निमित्त भगवान् ब्रह्माजी प्रकट हुनुभयो ॥८-९॥

ब्रह्माजीले भन्नुभयो – हे छोरा ! तिमीले कोमल शरीर भईकन पनि निर्भय बनेर यस निर्जन हिमालयमा कठोर किसिमको तपस्या गऱ्यौ, म छक्क परेँ। हे बाबु ! एक हजार वर्षसम्म तिमीले अवश्य नै भक्तिपूर्वक मेरो आराधना गरेर तपस्या गऱ्यौ त्यसैले मैले अब तिमीलाई नदिने भन्ने कुनै वर छैन। हे बाबु ! तिम्रो हृदयमा जे चाहना छ, त्यो वर माग। दिन नहुने रहेछ भने पनि म त्यो सबै तिमीलाई दिन्छु, यसमा सन्देह छैन ॥१०-१२॥

---

१. धातुसानौ प्रतप्तवान् इति न.सं.पु.पाठः। २. च स्तोत्रयन्मुने इति न.सं.पु.पाठः।
३. मृदुदेहो विभीषणः इति न.सं.पु.पाठः।

स्कन्द उवाच

इत्याकर्ण्य वचो दैत्यः पितामहस्य ब्रह्मणः[४]। मुमोद तारकस्तस्मै स्तोतुमारब्धवान्[५] पुनः ॥१३॥

तारक उवाच

पितामहाय धात्रे वै विधात्रे हि नमोऽस्तुते। निरञ्जनाय देवाय विरिञ्चिने[६] नमो नमः ॥१४॥

आद्याय सम्मनोज्ञाय विश्वरूपाय वै नमः। स्थूलसूक्ष्मशरीराय सर्वात्मने नमो नमः ॥१५॥

ददासि यदि मे ब्रह्मन् मनोवाञ्छोत्तमं वरम्। देवासुरैर्नरैः सर्वैरवध्यत्वं प्रदीयताम् ॥१६॥

यावन्तः प्राणिनः[७] सन्ति त्रिषु लोकेषु सर्वशः। अवध्योऽहं भवेयं वै तावकैः सृष्टिकर्मभिः ॥१७॥

स्कन्द उवाच

श्रुत्वा तद्वचनं ब्रह्मा स्वीकारं कृतवान्तदा। तस्मै तथाऽस्त्विति प्रोच्य[८] ब्रह्मलोकं ययौ पुनः ॥१८॥

ततो दैत्या मुदा युक्तास्तदन्तिकं समाययुः। अभिषेकं ददुः[९] तस्मै दुग्धप्रभाजलैस्तदा ॥१९॥

दैत्या ऊचुः

भो भो वत्स ! भवान् वीर ! गृहाण वै बलानि च[१०]। अद्यादि नो भवान् राजा भवतु च सुनिश्चितम् ॥२०॥

अस्मान् देवबलाम्भोधेर्गाढान् सन्तारयिष्यति। अस्माभिः संस्तुतो भक्त्या शासकः तारको भवेत्[११] ॥२१॥

तारक उवाच

नः स्थितिर्वत्स ! नैवाऽत्र न कार्ये कारका इह। गच्छत[१२] दानवाः स्वर्गे योत्स्यामश्च सुरैः[१३] समम् ॥२२॥

---

कार्तिक स्वामीले भन्नुभयो - पूजनीय ब्रह्माको यस्तो वचन सुनेर तारक दैत्य अत्यन्त प्रसन्न भयो र फेरि ब्रह्माको स्तुति गर्न थाल्यो ॥१३॥

तारक दैत्यले भन्यो- सम्पूर्ण संसारका सृष्टिकर्ता धाता पितामहलाई नमस्कार छ। निरञ्जन विरञ्जिस्वरूप देवतालाई बारम्बार नमस्कार छ। संसारका सबैभन्दा आद्यस्वरूप विश्वरूप मनोज्ञ भगवान्लाई नमस्कार छ। स्थूल तथा सूक्ष्म शरीर लिने सम्पूर्णका आत्मा भएका ईश्वरलाई बारम्बार नमस्कार छ। हे ब्रह्मा ! यदि हजुर मेरो इच्छानुसारको वर दिन चाहनुहुन्छ भने मलाई देवता, राक्षस र मानिस सबैले मार्न नसक्ने वर दिनुहोस्। तीनै लोकमा सबैतिर जे-जति तपाईंले सृष्टि गरेका प्राणीहरू छन् तिनीहरूबाट म अवध्य बनूँ अर्थात् मलाई कसैले मार्न नसकून् ॥१४-१७॥

कार्तिक स्वामीले भन्नुभयो - त्यस दैत्यको त्यस्ता वचन पनि स्वीकार गर्नुभयो र त्यस दैत्यलाई हुन्छ भनेर ब्रह्मा ब्रह्मलोक जानुभयो। त्यसपछि सबै दैत्यहरू जम्मा भएर त्यस तारक दैत्यको नजिकै आए र दुग्धप्रभा नदीबाट ल्याएको जलले त्यसलाई अभिषेक गरे ॥१८-१९॥

दैत्यहरूले भने - हे महावीर ! आजदेखि सम्पूर्ण सेनालाई लिनुहोस् र तपाईं हाम्रो राजा बन्नुहोस्, यो सुनिश्चित बनोस्। अब देवताको बलरूपी समुद्रबाट हामी प्रजालाई तपाईंले पार लगाउनुहुनेछ। आजदेखि तपाईं हाम्रो निश्चय नै तारक हुनुभयो ॥२०-२१॥

तारकले भन्यो - हे दानव हो ! अब यहाँ बसेर केही काम छैन, स्वर्गमा हिँड। यहाँ हामीसित युद्ध गर्ने हैसियतका प्रतिद्वन्द्वीहरू छैनन्। त्यसकारण हामी स्वर्गमा गई देवताहरूका साथ युद्ध गरौं ॥२२॥

---

४. भूमनः इति न.सं.पु.पाठः।
५. स्तोतुमारम्भितः इति न.सं.पु.पाठः।
६. विरिञ्चाय इति न.सं.पु.पाठः।
७. जीविनः इति न.सं.पु.पाठः।
८. प्रोक्त्वा इति न.सं.पु.पाठः।
९. ददौ इति न.सं.पु.पाठः।
१०. महावीर चक्रलोचन ते बलैः इति न.सं.पु.पाठः।
११. भवान्नो नूनतस्त्वं वा चाद्यादि तारको भव इति न.सं.पु.पाठः।
१२. गच्छध्वम् इति न.सं.पु.पाठः।
१३. युधिष्यामोऽमरैः इति न.सं.पु.पाठः।

स्कन्द उवाच

ततो दैत्या ययुः स्वर्गं पुरोधायाऽऽशु तारकम्। तत्राभूत्सुमहद्युद्धं देवदानवयोर्भृशम् ॥२३॥

निर्जित्य सकलान् देवान् तारको दानवैः सह। चकार त्रिदिवे राज्यं विद्राव्य त्रिदशान् ततः[१४] ॥२४॥

तद्विनाशाय जानीहि हेतुर्मे जन्म कुम्भज। रुद्रमुखारविन्दाद्धि पुरा प्रगणितं श्रुतम् ॥२५॥

ऋषय ऊचुः

दैत्यै राज्ये[१५] कृते स्वर्गे देवसैन्ये च विद्रुते। किमकुर्वन् सुरास्तत्र तद्बलार्दितसम्भ्रमाः ॥२६॥

लब्धवरोऽपि देवात् स तारकाख्यो महासुरः। कथं निर्जितवान् देवान् प्रभो ! तद्वद नोऽधुना ॥२७॥

लोमहर्षण उवाच

शृणुताऽऽर्याः प्रवक्ष्यामि यद् वृत्तातं पुराऽभवत्। गुरुव्यासमुखोद्भूतं स्कन्दस्य चरितं महत् ॥२८॥

दिवौकसः सगन्धर्वा ब्रह्माणं शरणं ययुः। बृहस्पतिं पुरोधाय भ्रष्टराज्याः पराजिताः ॥२९॥

नम्रप्रत्यर्चनाप्तास्ते ब्रह्मलोके सनातनात्। अभिप्रोचुर्भयात्तस्य कुचेष्टां ब्रह्मणे ध्रुवम् ॥३०॥

देवा ऊचुः

ॐ नमस्ते ब्रह्मणेऽब्जाय सर्वैश्वर्यस्वरूपिणे[१६]। जीवेश्वराय देवाय जीवसर्वाङ्गव्यापिने[१७] ॥३१॥

भवत्प्रसादतस्तात ! तारकेन हि सर्वशः। त्रैलोक्यं क्षोभितं शश्वल्लब्ध्वा च भवतो वरम् ॥३२॥

दशवर्षसहस्राणि स्वर्गराज्यञ्चकार सः। लब्धवरो महावीरो दिक्षु विद्राव्य नो भृशम् ॥३३॥

यद्युपायोऽस्ति[१८] चेन्नोऽज ! प्रोच्यतां विश्वहेतवे। येन हत्वाऽऽशु तं पापं स्थास्यामस्त्रिदिवे यथा ॥३४॥

---

कार्तिक स्वामीले भन्नुभयो – त्यसपछि तारक दैत्यलाई अगाडि लगाएर दैत्यहरू स्वर्गमा गए। त्यहाँ देवता र दानवको अत्यन्त ठूलो युद्ध युद्ध भयो। दानवहरूको सहायता लिएर तारक दैत्यले सबै देवताहरूलाई जित्यो र उनीहरूलाई विभिन्न दिशातिर लखेटेर उसले स्वर्गमा राज्य गर्‍यो। हे अगस्त्य मुनि ! त्यसलाई नाश गर्न म जन्मिएको हुँ। यो कुरा मैले पहिले भगवान् शङ्करका मुखारविन्दबाट सुनेको थिएँ ॥२३-२५॥

ऋषिहरूले भने – देवताका सेना भागे, दैत्यराज तारकले स्वर्गमा राज्य गर्न थाल्यो, दैत्यसेनाबाट पीडित हुँदै आत्तिएका देवताहरूले अनि के गरे ?। तारक नाम गरेको त्यस दैत्यले ब्रह्माजीबाट वर पाएर कसरी देवताहरूलाई जित्यो ? हे प्रभु ! हामीलाई त्यो कुरा बताउनुहोस् ॥२६-२७॥

लोमहर्षणले भने – हे मुनिहरू हो ! गुरु वेदव्यासको मुखबाट निस्किएको महत्त्वपूर्ण कार्तिक स्वामीको चरित्रसँग सम्बद्ध पुरानो एउटा वृत्तान्त छ, त्यो म बताउँछु, सुन्नुहोस्। गन्धर्वले सहित भएका देवताहरू हारेर राज्यबाट च्युत भएपछि बृहस्पतिलाई अगाडि लगाई ब्रह्माजीको शरणमा गए। ब्रह्मलोकमा गएर ब्रह्माजीलाई विधिपूर्वक नमस्कार तथा पूजा गरेपछि तारकासुरबाट पीडित भएका देवताहरूले उहाँलाई त्यस दैत्यको सबै क्रियाकलापहरू निवेदन गरे ॥२८-३०॥

देवताहरूले भने – जलबाट जन्मिएका, सबै किसिमको रूप लिने, जीवका ईश्वर तथा प्राणीहरूको सबै अङ्गमा रहने देवतास्वरूप ब्रह्माजीलाई नमस्कार छ। हे ब्रह्माजी ! हजुरको कृपाबाट वर प्राप्त गरेर तारक दैत्यले तीनै लोकलाई क्षुब्ध गराइराखेको छ। त्यस महावीर दैत्यले वर पाएर हामीहरूलाई विभिन्न दिशामा लखेटेर स्वर्गमा राज्य गरेको दश हजार वर्ष भयो। हे ब्रह्माजी ! जुन उपायबाट पापी त्यस दुष्टलाई मारेर हामी स्वर्गमा बस्न सक्छौं, विश्वकल्याणका लागि त्यस दैत्यलाई तुरुन्त मार्ने त्यस्तो कुनै उपाय छ भने बताइदिनुहोस् ॥३१-३४॥

---

१४. दिशाः इति न.सं.पु.पाठः।

१५. दैत्यराज्ये इति न.सं.पु.पाठः।

१६. सर्वरूपाय भूतिने इति न.सं.पु.पाठः।

१७. सर्वाङ्गेषु च जन्मिनाम् इति न.सं.पु.पाठः।

१८. उपायमस्ति इति न.सं.पु.पाठः।

ब्रह्मोवाच

विषादस्त्यज्यतां देवाः[१९] तस्मै वरप्रदानतः। यद्यत्कृतानि कर्माणि कर्मद्रुमः फलत्यपि ॥३५॥
तेनावश्यं तपःस्थेन प्राप्तव्यं तपसः फलम्। अदेयमपि दातव्यं सुकठोरतपस्विने ॥३६॥
तपसश्च फलान्ते हि चावश्यं तं हनिष्यति[२०]। रुद्रात्मजो महायुद्धे शक्त्या कुमार ईश्वरः ॥३७॥

लोमहर्षणः उवाच

ब्रह्मणोक्तं समाकर्ण्य चाऽऽमन्त्रयन्सुराग्रजाः। ययुः शिवान्तिकं सर्वे सम्भूय त्रिदशा द्रुतम् ॥३८॥
ऊचुः प्रणम्य ते तस्मै तद्वृत्तान्तं सुरद्विषाम्। रक्ष रक्ष महादेव ! कृत्वेति नः स्वकिङ्करान् ॥३९॥
तदाकर्ण्य वचो रुद्रो देवानां पथ्यमात्मनः। स्वीयं तेजोऽक्षिपत्[२१] देव्यां कुमारजन्महेतवे ॥४०॥
तस्यां रुद्रात्मजो जज्ञे महावीरो महाबलः। ववृधे स[२२] दिनेऽजस्रं सिते पक्षे यथा शशी ॥४१॥
तेजोबलान्वितः स्कन्दः सर्वोन्नतसुविक्रमः। रुद्रात्मज इति श्रुत्वा व्यषीदन्नसुरा[२३] मुहुः ॥४२॥
साच्युतशङ्करा देवाः प्रभातीर्थं ययुर्भुवि। सितप्रभाप्रभानद्योः सङ्गमे तीर्थमुत्तमे ॥४३॥
तत्र स्नात्वा दिवं यान्ति परिवारैः समन्विताः। गवां कोटिफलं प्राप्य राजसूयशतोद्भवम् ॥४४॥
ततोऽभिषेकसम्भारान् सर्वान् सम्भृत्य शास्त्रतः। बृहस्पतिः समिद्धेऽग्नौ जुहोत्यग्निं यथाविधि ॥४५॥
ततो हिमवता दत्ते मणिप्रवरशोभिते। दिव्यरत्नाञ्चिते पुण्ये निषण्णः परमासने ॥४६॥
सर्वमङ्गलसम्भारैर्विधिमन्त्रपुरस्कृतम्। आभिषेचनिकं द्रव्यं गृहीत्वा प्रययुः सुराः ॥४७॥

---

ब्रह्माजीले भन्नुभयो – हे देवता हो ! त्यसलाई वर दियो भनेर तिमीहरूले खेद हुनुपर्दैन, कर्मवृक्षले गरेका कर्महरूको नै फल दिन्छ ॥३५॥ तपस्या गर्दा-गर्दा कठोर तपस्वी त्यस दैत्यलाई नदिनुहुने वर पनि मैले दिएँ। तपस्याको फल भोग गरिसकेपछि भयङ्कर युद्धमा शिवजीका पुत्र कार्तिक स्वामीले शक्ति अस्त्रको प्रयोग गरेर त्यस दैत्यलाई अवश्य मार्नुहुनेछ ॥३५-३७॥

लोमहर्षणले भने – ब्रह्माजीले भनेको कुरा सुनेर वरिष्ठ देवताहरूले आपसमा सल्लाह गरे र उनीहरू तुरुन्त जम्मा भएर शिवजीको नजिकै गए। ती देवताहरूले शङ्करलाई नमस्कार गरेर राक्षसहरूको त्यो वृत्तान्त बताए र भने – हे महादेव ! हामीलाई सेवक हुन् भन्ने ठानेर रक्षा गर्नुहोस्, रक्षा गर्नुहोस्। भगवान् शङ्करले देवताको वचन सुनेर उनीहरूको हितका लागि कार्तिक स्वामीलाई जन्म दिने आफ्नो तेज देवीमा राख्नुभयो। देवी पार्वतीबाट अत्यन्त बलिया महावीर कार्तिक स्वामीको जन्म भयो। उनी जसरी शुक्ल पक्षमा चन्द्रमा दिनानुदिन बढ्दै जान्छन्, त्यसरी नै बढे। सबैभन्दा पराक्रमशाली तेजोबलले युक्त भएका कार्तिक स्वामी छन् भन्ने सुनेर सबै राक्षसहरू खिन्न भए। त्यसपछि विष्णुलाई साथै लिएर देवताहरू सितप्रभा र प्रभानदीको सङ्गममा रहेको उत्तम तीर्थमा गए। त्यस तीर्थमा स्नान गर्दा प्राणीहरू करोडौं गाई दान गरेको र सयौं राजसूय यज्ञ गरेको फल प्राप्त गरी आफ्ना परिवारसहित स्वर्ग जान्छन्। त्यसपछि बृहस्पतिले शास्त्रअनुसार सम्पूर्ण अभिषेकसँग सम्बद्ध सामग्री जम्मा गरी विधिपूर्वक बलेको अग्निमा हवन गरे ॥३८-४५॥

हिमालयले दिएको उत्कृष्ट मणिद्वारा सुशोभित पवित्र आसनमा रहेका कार्तिक स्वामीलाई अभिषेक गर्न देवताहरू सम्पूर्ण माङ्गलिक वस्तुले विधिपूर्वक वेदमन्त्रद्वारा संस्कार गरिएको शक्तिवर्धक सामग्री लिएर त्यही पवित्र सङ्गममा गए ॥४६-४७॥

---

१९. मा मा सुरा विषीदध्वम् इति न.सं.पु.पाठः।
२०. वधिष्यति इति न.सं.पु.पाठः।
२१. अक्षिपतेजसम् इति न.सं.पु.पाठः।
२२. संवर्द्धते इति न.सं.पु.पाठः।
२३. विषीदन्त्यसुरा इति न.सं.पु.पाठः।

इन्द्रोपेन्द्रौ कुमारेणसूर्याचन्द्रमसौ तथा। धाता चैव विधाता च सङ्गता अनिलानलौ ॥४८॥
पूष्णाऽर्यम्णा भगेनापि ह्यंशेन च विवस्वता[२४]। रुद्रश्च सहितो धीमान् मित्रेन वरुणेन च ॥४९॥
रुद्रैर्वसुभिरादित्यैरश्विभ्याञ्च वृतः प्रभुः। विश्वेदेवैर्मरुद्भिश्च साध्यैश्च पितृभिः सह ॥५०॥
गन्धर्वैरप्सरोभिश्च यक्षराक्षसपन्नगैः। देवर्षिभिरसंख्यानैर्बालखिल्यैस्तथैव च ॥५१॥
ब्रह्मर्षिभिर्वृतश्चैव[२५] स्वाहास्वधामरीचिभिः। वृतश्चाऽङ्गिरसोभिश्च यतिभिश्च महात्मभिः ॥५२॥
सर्वैर्विद्याधरैः पुण्यैर्योगसिद्धैस्तथा वृतः। पितामहः पुलस्त्यश्च पुलहश्च महातपाः ॥५३॥
अङ्गिराः कश्यपोऽत्रिश्च मरीचिर्भृगुरेव च। क्रतुर्हरः प्रचेताश्च मनुर्दक्षस्तथैव च ॥५४॥
ऋतवश्च ग्रहास्तत्र ज्योतींषि चाऽऽययुस्तथा। मूर्त्तिमय्यश्च सरितो देवाश्चैव सनातनाः ॥५५॥
समुद्राश्च ह्रदाश्चैव तीर्थानि विविधानि च। पृथिवी द्यौर्दिशश्चैव पादपाश्च तथाविधाः ॥५६॥
अदितिर्देवमाता च ह्रीः श्रीः स्वाहा सरस्वती। उमा शचिः सिनीवाली तथा चाऽनुमती कुहूः ॥५७॥
राका च वृषणा चैव पत्न्यश्चाऽन्या दिवौकसाम्। हिमवाँश्चैव विन्ध्यश्च मेरुश्चाऽनेकशृङ्गवान् ॥५८॥
ऐरावतः सानुचरः कलाः काष्ठास्तथैव च। मासार्द्धमासऋतवो रात्र्यहनी तथाऽपरे ॥५९॥
उच्चैःश्रवा हयश्रेष्ठो नागराजश्च वासुकिः। अरुणो गरुडश्चैव वृक्षाश्चौषधिभिः सह ॥६०॥
धर्मश्च भगवान्देवाः समाजग्मुर्हि सङ्गताः। कालो यमश्च मृत्युश्च यमस्यानुचराश्च ये ॥६१॥
ते कुमाराभिषेकार्थं समाजग्मुस्ततस्ततः। जगृहुस्ते तदा तत्र सर्व एव दिवौकसः ॥६२॥
अभिषेचनकुम्भांस्तान् मङ्गलोदकपूरितान्[२६]। दिव्यैः सम्भारसंयुक्तैः करकैः काञ्चनैः शुभैः ॥६३॥

---

त्यस ठाउँमा अभिषेकका लागि इन्द्र, बलशाली उपेन्द्र, सूर्य, चन्द्रमा, ब्रह्मा, विधाता, वायु, अग्नि, पूषा, भग, अर्यमा, आफ्नो अंशले सहित भएका विवस्वान्, रुद्र, मित्र र वरुण पनि गए। त्यस्तै एकादश रुद्र, अष्टवसु, अश्विनीकुमार, विश्वदेव, मरुद्गण, साध्य, पितृहरू, गन्धर्व, अप्सरा, यक्ष, राक्षस, सर्प, असङ्ख्य देवर्षिहरू र बालखिल्य ऋषिहरू पनि गए ॥४८–५१॥

यसैगरी ब्रह्मर्षिहरू, स्वाहा, स्वधा, मरीचि, अङ्गिरा इति, महात्माहरू, सबै विद्याधर, योगसिद्ध, धर्मात्माहरू, पितामह, पुलस्त्य र महातपस्वी पुलह पनि गए। त्यस्तै अङ्गिरा, कश्यप, अत्रि, मरीचि, भृगु, ऋतु, हर, प्रचेता, मनु, दक्षहरू, ऋतुहरू, ग्रहहरू, तारागण, मूर्तिधारी नदीहरू, देवताहरू तथा सनातन धर्महरू त्यहाँ आएसमुद्रहरू, साना–साना जलाशयहरू, नानाथरी तीर्थहरू, पृथ्वी, स्वर्ग, दशैवटा दिशा, अनेक प्रकारका वृक्षहरू पनि त्यहीं आए ॥५२–५६॥

देवमाता अदिति, लज्जा, लक्ष्मी, स्वाहा, सरस्वती, पार्वती, इन्द्राणी, चन्द्रकला बाँकी रहेको अमावास्या र चन्द्रकला बाँकी नरहेको अमावास्या पनि त्यहाँ आए ॥५७–५८॥ कलापूर्ण भएको पूर्णिमा, अरू देवताका पत्नीहरू, हिमालय पर्वत, विन्ध्याचल, धेरै टाकुराहरूको भएको सुमेरुपर्वत, सेवकले सहित भएको ऐरावत, तीसवटा काष्ठाहरू, महिना, आधा महिना, छ ऋतु, रात तथा दिन पनि त्यहाँ गए। घोडाहरूमा श्रेष्ठ उच्चैःश्रवा घोडा, शेषनाग, वासुकिनाग, सूर्यको सारथि अरुण, गरुड, औषधिले सहित भएका वृक्षहरू समेत आए ॥५९–६०॥

धर्म, भगवान्, देवताहरू, काल, यमराज, मृत्यु र यमराजका जीर्ण सेवकहरू थिए, ती–ती ठाउँबाट ती पनि आए। त्यसपछि त्यहाँ आएका सबै देवताहरूले माङ्गलिक पदार्थ र अभिषेक गर्ने घडा समाते। ती घडाहरू स्वर्गीय सामग्री र रमणीय सुनका कमण्डलुले युक्त भएका थिए ॥६१–६३॥

---

२४. पूष्णा भगेनार्यम्णा च अंशेन च विवस्वता इति न.सं.पु.पाठः।

२५. ब्रह्मर्षिभिस्तथा चैव इति न.सं.पु.पाठः।

२६. अभिषेचनकुम्भानि मङ्गलानि च सर्वशः इति न.सं.पु.पाठः।

गण्डकीभिश्च पुण्याभिर्दिव्यतोयाभिरेव च। प्रभातीर्थोद्धृतैस्तोयैः स्वर्णकलशपूरितैः ॥६४॥
ददौ ब्रह्मा कुमाराय ह्यभिषेकमृचः पठन्। अभ्यषिञ्चन् कुमारं वै सम्प्रहृष्टास्ते दिवौकसः ॥६५॥
सेनापतिं महात्मानमसुराणां भयङ्करम्। मुनयो वै यथापूर्वं वरुणञ्च जलेश्वरम् ॥६६॥
तथाभ्यषिञ्चद् भगवान् ब्रह्मा लोकपितामहः। कश्यपश्च महातेजा ये चान्ये नानुकीर्तिताः[२७] ॥६७॥
तस्मै ब्रह्मा ददौ प्रीतो बलिनो वातरंहसः। कामवीर्यधरान् सिद्धान् महापारिषदान्[२८] प्रभुः ॥६८॥
नन्दिसेनं लोहिताक्षं घण्टाकर्णञ्च सम्मतम्। चतुर्थमस्यानुचरं ख्यातं कुमुदमालिनम् ॥६९॥
ततः स्थाणुर्महावेगं बृहन्तं पार्षदं[२९] प्रभुः। मायाशतधरं कामं कामवीर्यबलान्वितम् ॥७०॥
ददौ स्कन्दाय भूतेशः सुरारिविनिबर्हणम्। स हि देवासुरे युद्धे दैत्यानां भीमकर्मणाम् ॥७१॥
जघान दोर्भ्यां संक्रुद्धः प्रयुतानि चतुर्दश। तथा देवा ददुस्तस्मै सेनां नैर्ऋतसङ्कुलाम् ॥७२॥
देवशत्रुक्षयकरीमजयां विष्णुरूपिणीम्। जयशब्दं ततश्चक्रुर्देवा सर्वे सवासवाः ॥७३॥
गन्धर्वयक्षरक्षांसि मुनयः पितरस्तथा। ततः प्रादादनुचरौ यमः कालोपमावुभौ ॥७४॥
सुभ्राजो भास्वरश्चैव यौ तौ सूर्यानुयायिनौ ॥७५॥
तौ सूर्यः कार्त्तिकेयाय ददौ प्रीतः प्रतापवान्। कैलासशृङ्गसङ्काशौ श्वेतमाल्यानुलेपनौ ॥७६॥
सोमोऽप्यनुचरं प्रादान्मालं सुमालमेव च। ज्वालाजिह्वं तथा ज्योतिरात्मजाय हुताशनः ॥७७॥
ददावनुचरौ शूरौ परसैन्यप्रमाथिनौ। परिघश्चरटञ्चैव भीमञ्च सुमहाबलम् ॥७८॥
दहतिं दहनञ्चैव प्रचण्डो वीर्यसम्मतः। अंशोऽप्यनुचरान् पञ्च ददौ स्कन्दाय धीमते ॥७९॥

---

तिनीहरूमा गण्डकी आदि नदीको पवित्र जल राखिएको थियो। प्रभातीर्थबाट उभाएर ल्याएको जल पनि त्यसमा राखिएको थियो। त्यस्ता कलश लिएर ऋचा पढ्दै ब्रह्माजीले कार्तिक स्वामीलाई अभिषेक दिनुभयो। प्रसन्न भएर देवताहरूले पनि कुमारलाई अभिषेक गरे। ऋषिहरूले अघि जसरी जलका मालिक वरुणलाई अभिषेक गरेका थिए, त्यसैगरी सेनापति, असुरलाई त्रास पैदा गर्ने कार्तिक स्वामीलाई लोकका पितामह ब्रह्मा, कश्यपऋषि र अरू तेजस्वी जति मानिसहरू थिए, ती सबैले अभिषेक गरे। प्रसन्न भएका ब्रह्माले कार्तिक स्वामीलाई वायुको जस्तो वेग भएका, इच्छानुसारको पराक्रमलाई धारण गर्ने सिद्ध पराक्रमी महापार्षदहरू दिनुभयो ॥६४-६८॥

तिनीहरू नन्दिसेन, लोहिताक्ष, घण्टाकर्ण नाम भएका थिए। यिनको चौथो अनुचर कुमुदमाली थियो। त्यसपछि शिवजीले उहाँलाई अत्यन्त वेग भएको ठूलो गण दिनुभयो। भगवान् शङ्करले इच्छाअनुसार सयौं मायालाई धारण गर्न सक्ने र बलिया राक्षसलाई नाश गर्न सक्ने सयकडौं गणहरू दिनुभयो। देवता र दानवको लडाईंमा अत्यन्त क्रुद्ध भएका कार्तिक स्वमीले दुराचारी र दैत्यको सेनालाई दुई हातले सजिलैसँग मार्नुभयो। त्यस्तै देवताहरूले पनि कार्तिक स्वामीलाई दैत्यलाई संहार गर्ने र कसैले जित्न नसक्ने विष्णुरुपी सेना प्रदान गरे। त्यसपछि इन्द्रसहित भएका सम्पूर्ण देवताहरू, गन्धर्व, यक्ष, राक्षस, मुनि तथा पितृहरूले जय-जयकार गरे ॥६९-७४॥

त्यसपछि यमराजले महाकालजस्ता अत्यन्त तेजस्वी र पराक्रमी उन्माथ र प्रमाथ नाम गरेका दुई सेवक दिए। सूर्यको पछिपछि हिँड्ने सुभ्राज र भास्वर नाम गरेका जुन दुई सेवक थिए। सूर्यले प्रसन्न भएर ती सेवकहरू कार्तिक स्वामीलाई दिए। ती कैलासको चुचुरोजस्तै कान्ति भएका, सेतो चन्दन र सेतै माला लगाएका थिए। चन्द्रमाले पनि माल र सुमाल नाम गरेका सेवकहरू कार्तिक स्वामीलाई दिए। अग्निले पनि शत्रुको सेनालाई मर्दन गर्न सक्ने ज्वालाजिह्व र ज्योति नाम गरेका दुई वीर सेवक आफ्नो पुत्र कार्तिक स्वामीलाई दिए। परिघले पनि चरट र महाबली भीम नाम भएका दुई सेवकहरू कार्तिक स्वामीलाई प्रदान गरे। त्यसैगरी प्रचण्डले पनि महापराक्रमी दहति र दहन नाम भएका दुई सेवक दिए ॥७५-७९॥

---

२७. ना तु कीर्तिताः इति न.सं.पु.पाठः। २८. महापारषदम् इति न.सं.पु.पाठः।
२९. महापारिषदम् इति न.सं.पु.पाठः।

उत्काशं पञ्चकञ्चैव वज्रदण्डधरावुभौ। स्कन्दाय ददतुः प्रीतावश्विनौ स्वकमण्डलुम् ॥८०॥
स्कन्दनं कुसुमञ्चैव कुमुदञ्च महात्मने। डम्बरोडुम्बरौ चैव ददौ धाता महात्मने ॥८१॥
उन्माथञ्च प्रमाथञ्च महावीर्यौ महाद्युती। चक्रानुचक्रौ बलिनौ मेघवर्णौ मदोत्कटौ।
ददौ त्वष्टा महाकायौ स्कन्दायानुचरावुभौ ॥८२॥
सुव्रतं सत्यसत्यञ्च ददौ मित्रो महात्मने। कुमाराय महात्मानौ तपोविद्यासमन्वितौ ॥८३॥
सुदर्शनीयौ वरदौ त्रिषु लोकेषु विश्रुतौ। सुप्रभञ्च महात्मानं शुभकर्माणमेव च ॥८४॥
कार्त्तिकेयाय सम्प्रादाद्विधाता लोकविश्रुतौ। पालिपात्रं कालिकञ्च महामायान्वितावुभौ ॥८५॥
पूषा च पार्षदौ प्रादात्कार्त्तिकेयाय सुव्रतः। बलं चाऽतिबलञ्चैव महावक्त्रौ महाबलौ ॥८६॥
प्रददौ कार्त्तिकेयाय वायुः सर्वबलोद्धतः। घसं चाऽतिघसञ्चैव सितवक्त्रौ महाबलौ ॥८७॥
प्रददौ कार्त्तिकेयाय वरुणः सत्यसङ्गरः। सुवर्चसं महात्मानं तथैवाऽप्यतिवर्चसम् ॥८८॥
हिमवान् प्रददौ भूयो हुताशनसुताय वै। काञ्चनञ्च महात्मानं मेघमालिनमेव च ॥८९॥
ददावनुचरौ मेरुरग्निपुत्राय साम्प्रतम्। स्थिरञ्चैवास्थिरञ्चैव सुमेरुश्चाऽपरौ ददौ ॥९०॥
स्कन्दाय च महात्मानौ महाबलपराक्रमौ। उच्छ्रितञ्चाऽग्निशृङ्गञ्च महापाषाणयोधिनौ ॥९१॥
स्कन्दाय प्रददौ भक्त्या विन्ध्यश्च पार्षदद्वयम्[30]। सङ्ग्रहं विग्रहञ्चैव समुद्रोऽपि गदाधरौ ॥९२॥
स्कन्दाय प्रददौ सम्यक् महान्तौ पार्षदावुभौ[31]। उन्मादं पुष्पदन्तञ्च शङ्कुकर्णं तथैव च ॥९३॥
स्कन्दाय प्रददौ भूयः पार्वती शुभदर्शना। जयं महाजयञ्चैव नागौ गिरिशसूनवे ॥९४॥

---

अंशले पनि कार्तिक स्वामीलाई पाँच सेवक प्रदान गरे। तीमध्ये उत्काश र पञ्चक नाम गरेका दुई सेवक वज्र र दण्ड हातमा लिएका थिए। त्यसबेला प्रसन्न भएका अश्विनीकुमारले सुन्दर कमण्डलु दिए। धाताले स्कन्दन, कुसुम र कुमुद महात्मा कार्तिक स्वामीलाई दिए ॥८०–८१॥

मेघको जस्तो वर्ण भएका, मदोन्मत्त, बलिया डम्बर, उडुम्बर, चक्र र अनुचक्र नाम गरेका सेवकहरू पनि प्रदान गरे। त्वष्टाले ठूलो शरीर भएका सुनन्द र सत्यसन्ध नाम गरेका दुई आफ्ना सेवक महात्मा कार्तिक स्वामीलाई दिए। मित्रले तपस्या र विद्याले युक्त भएका तीनै लोकमा ख्याति पाएका उदारमना महात्मा सेवक स्कन्दलाई प्रदान गरे ॥८२–८३॥

धाताले पनि अत्यन्त सुन्दर, लोकमा प्रसिद्ध शुभकर्म र सुप्रभ नाम गरेका वीरहरू कार्तिक स्वामीलाई दिए। असल व्रत लिने पूषाले पनि माया गर्न सिपालु पालिपात्र र कालिक नाम भएका दुई पार्षद कार्तिक स्वामीलाई दिए। सम्पर्ण बलले उद्धत भएका वायुले पनि ठूलो मुख र ठूलो बल भएका बल तथा अतिबल नाम गरेका दुई सेवक कार्तिक स्वामीलाई दिए। सत्य प्रतिज्ञा भएका वरुणले घस र अतिघस नाम गरेका बलिया दुई सेवक अग्निपुत्रलाई दिए ॥८४–८७॥

हिमालयले सुवर्चस र अतिवर्चस नाम गरेका दुई महात्माहरू अग्निपुत्रलाई दिए। मेरु पर्वतले कार्तिक स्वामीलाई महात्मा काञ्चन र मेघमाली नाम गरेका दुई सेवकहरू दिए। अर्को सुमेरु पर्वतले स्थिर, अस्थिर नाम गरेका अत्यन्त पराक्रमी महात्मा सेवक कार्तिक स्वामीलाई दिए। विन्ध्याचल पर्वतले उच्छ्रित र अग्निशृङ्ग नाम गरेका ठूलो ढुङ्गासँग पनि लड्न सक्ने दुई पार्षदहरू भक्तिपूर्वक कार्तिक स्वामीलाई दिए ॥८८–९१॥

समुद्रले गदाधारी सङ्ग्रह र विग्रह नाम गरेका दुई पार्षदहरू कार्तिक स्वामीलाई श्रद्धाका साथ दिए। राम्रो दृष्टि भएकी पार्वतीले कार्तिक स्वामीलाई उन्माद, पुष्पदन्त र शङ्कुकर्ण नाम भएका सेवकहरू दिनुभयो। सर्पका राजा नागेन्द्र वासुकिले कार्तिक स्वामीलाई जय र महाजय नाम गरेका दुईवटा नाग प्रदान गरे ॥९२–९४॥

---

२७. ना तु कीर्तिताः इति न.सं.पु.पाठः। २८. महापारषदम् इति न.सं.पु.पाठः। २९. महापारिषदम् इति न.सं.पु.पाठः।
३०. विन्ध्यः पारिषदावुभौ इति न.सं.पु.पाठः। ३१. महापारिषदावुभौ इति न.सं.पु.पाठः।

नागेन्द्रः प्रददौ सम्यक् वासुकिः पन्नगेश्वरः। एवं साध्याश्च रुद्राश्च वसवः पितरस्तथा ॥९५॥
सागराः सरितश्चैव गिरयश्च महाबलाः। ददुः सेनाबलाध्यक्षान् शूलपट्टिशधारिणः ॥९६॥
दिव्यप्रहरणोपेतान्नानावेषविभूषितान्। असिमुद्गरहस्तांश्च दण्डहस्ताँस्तथापरे ॥९७॥
गदाभुशुण्डिहस्ताश्च तथा तोमरपाणयः। आयुधैर्विविधैर्घोरैर्महात्मानो मनोजवाः ॥९८॥
महाबला महावेगा महान्तः पार्षदास्तथा[३२]। एते चाऽन्ये च बहवो महान्तः पार्षदा[३३] द्विजाः ॥९९॥
उपतस्थुर्महात्मानं कार्त्तिकेयं यशस्विनम्। दिव्याश्चैवान्तरिक्षाश्च पार्थिवाश्चानिलोपमाः ॥१००॥
व्यादिष्टाः परमेशेन स्कन्दस्यानुचराः समे[३४]। तादृशानां सहस्राणि प्रयुतान्यर्बुदानि च ॥१०१॥
अभिषिच्य महात्मानं परिवार्योपतस्थिरे। अनुजग्मुर्महात्मानं त्रिदशेन्द्रस्य सम्मताः ॥१०२॥
ततः शक्त्यस्त्रमददाद् भगवान् पाकशासनः। महास्वनां महाघण्टां द्योतमानां सितप्रभाम् ॥१०३॥
ददौ पशुपतिस्तस्मै सर्वभूतमहाभयाम्। उग्रां नानाप्रहरणां तपोवीर्यबलान्विताम् ॥१०४॥
अजेयां स्वगणैर्युक्तां नाम्ना सेनां धनञ्जयाम्। रुद्रतुल्यबलैर्युक्तां योधानामयुतैस्त्रिभिः ॥१०५॥
रणान्न सा विजानाति कदाचिद्विनिवर्त्तितुम्। विष्णुर्ददौ वैजयन्तीं मालां बलविवर्धिनीम् ॥१०६॥
चतुःषष्टिसुकोटीनां समूहं योगिनीचमूम्। उमा देवी ददौ स्नेहात्सर्वोन्नतबलान्विताम् ॥१०७॥
ददौ गौरी विरजसी वाससी सूर्यसप्रभे। गङ्गा कमण्डलुं दिव्यममृतोद्भवमुत्तमम् ॥१०८॥
ददौ प्रीत्या कुमाराय दण्डञ्चैव बृहस्पतिः। गरुड आतपत्रञ्च मयूरश्चित्रबर्हिणम् ॥१०९॥
अरुणस्ताम्रचूडञ्च प्रददौ चरणायुधम्। नागन्तु वरुणो राजा बलवीर्यसमन्वितम् ॥११०॥
कृष्णाजिनं ततो ब्रह्मा ब्राह्मण्याय ददौ प्रभुः। समरेषु जयञ्चैव प्रददौ लोकभावनः ॥१११॥

---

यसैगरी साध्य, रुद्र, वसु, पितृ, सागर तथा बलवान् पर्वतहरूले कार्तिक स्वामीलाई शूल तथा पट्टिश लिएका सेनापतिहरू प्रदान गरे। त्यस्तै अरूले दिव्य हातहतियारले युक्त, विभिन्न किसिमका भेषभूषा लगाएका, तरवार र मुङ्ग्रो हातमा लिएका र लट्ठी हातमा लिने सेनाहरू प्रदान गरे। हातमा गदा, तोप, घुयेंत्रो र विभिन्न डरलाग्दा अस्त्रहरू लिएका, मन जत्तिकै दगुर्ने बलशाली महापार्षदहरू र अरू पनि त्यस्तै पार्षदहरू कीर्तिशाली महात्मा कार्तिक स्वामीका सामु उपस्थित भए ॥९५-१००॥

कार्तिक स्वामीका कुनै दिव्य, कुनै अन्तरिक्षमा हिँड्ने, कुनै पृथ्वीमा हिँड्ने र वायुजस्तै वेग भएका अरू पनि परमेश्वरको आज्ञा पाएर कार्तिक स्वामीको अनुचर भए। त्यस्ता हजार, दश हजार र अरबौं सेवकहरूले महात्मा कार्तिक स्वामीलाई अभिषेक गरी वरिपरिबाट घेरेर बसे। इन्द्रप्रिय ती अनुचरहरू सबै कार्तिक स्वामीको पछि लागे। त्यसपछि भगवान् इन्द्रले ठूलो आवाज गर्ने, चम्किलो सेतो रङ्ग भएको महाघण्टा र शक्ति नाम गरेको अस्त्र कार्तिक स्वामीलाई दिए। त्यसपछि भगवान् पशुपतिनाथले सम्पूर्ण प्राणीहरूको मनमा त्रास पैदा गर्ने, विभिन्न शस्त्र-अस्त्रले युक्त भएको, तपस्या बल र पराक्रमले सम्पन्न, कसैले जित्न नसक्ने, शिवजीजत्तिकै पराक्र भएका तीस हजार सैनिकहरूले युक्त भएको धनञ्जय नाम गरेको सेना कार्तिक स्वामीलाई दिनुभयो ॥१०१-१०५॥

विष्णुले बललाई बढाउने खालको वैजयन्ती नाम गरेको माला कार्तिक स्वामीलाई दिनुभयो। यो सेनाले कहिल्यै पनि लडाईंबाट फर्कने भन्ने कुरा जानेकै छैन। उमाले स्नेहपूर्वक उत्कृष्ट बलले सम्पन्न चौसट्ठी योगिनीको समूह कार्तिक स्वामीलाई प्रदान गर्नुभयो। गौरीले सूर्यजस्तै चम्किला धूलो नभएका दुईवटा लुगा दिनुभयो। गङ्गाले उत्तम अमृतले युक्त भएको दिव्य कमण्डलु उहाँलाई दिनुभयो। बृहस्पतिले प्रेमपूर्वक कुमारलाई लट्ठी दिनुभयो। गरुडले छाता दिनुभयो र मयूरले छिरबिरे आफ्नो प्वाँख दियो। अरूले खुट्टा नै हतियार भएको कुखुरा दिए, वरुणले बल र वीर्यले युक्त भएको नाग दिनुभयो। ब्रह्माले कार्तिक स्वामीलाई कृष्णसार मृगको छाला र लोकलाई आनन्द दिने विष्णुले युद्धमा जय दिनुभयो ॥१०६-१११॥

---

३२. महापारिषदास्तथा इति न.सं.पु.पाठः। ३३. महापारिषदा इति न.सं.पु.पाठः।
३४. भवन् इति न.सं.पु.पाठः।

सैनापत्यमनुप्राप्य स्कन्दो देवगणैः सह। शुशुभे ज्वलितोऽर्चिष्मान् द्वितीय इव पावकः ॥११२॥
ततश्च पार्षदैः[३५] सार्द्धं मातृभिश्च समन्वितः। ययौ दैत्यविनाशाय ह्लादयन्सुरपुङ्गवान् ॥११३॥
सा सेना नैर्ऋती भीमा सघण्टोच्छ्रितकेतना। सभेरीशङ्खमुरजा सायुधा सपताकिनी ॥११४॥
शारदी द्यौरिवाऽऽभाति ज्योतिर्भिरिव शोभिताः। ततो देवनिकायास्ते नानाभूतगणास्तथा ॥११५॥
वादयामासुरव्यग्रा भेरीशङ्खांश्च[३६] पुष्करान्। पटहान् मर्मरांश्चैव क्रकचान् गोमुखादिकान् ॥११६॥
आडम्बरानेकमुखाण्डिडिण्डिमाँश्च महास्वनान्। कांस्यजान् ताम्रजान्नादान्पञ्चतालघनस्वनान् ॥११७॥
तुष्टुवुस्ते कुमारं तु सर्वे देवाः सवासवाः। जगुश्च देवगन्धर्वा ननृतुश्चाऽप्सरोगणाः ॥११८॥
ततः प्रीतो महासेनस्त्रिदशेभ्यो वरं ददौ। रिपून् हन्ताऽस्मि समरे ये च रोषचिकीर्षवः ॥११९॥
प्रतिगृह्य वरं देवास्तस्माद्विबुधसत्तमात्। प्रीतात्मानो महात्मानो मेनिरे प्रहतान् रिपून् ॥१२०॥
सर्वेषां भूतसङ्घानां हर्षान्नादः समुत्थितः। अपूपुरच्च लोकाँस्त्रीन् वरे दत्ते महात्मना ॥१२१॥
स निर्ययौ महासेनो महत्या सेनया वृतः। वधाय युधि दैत्यानां रक्षार्थञ्च दिवौकसाम् ॥१२२॥
व्यवसायो दया धर्मः सिद्धिर्लक्ष्मीर्धृतिः स्मृतिः। महासेनस्य सेनानामग्रे जग्मुः प्रिया भृशम् ॥१२३॥
स तया भीमया देवः शूलमुद्गरहस्तया। ज्वलितालातधारिण्या चित्राभरणवर्म्मया ॥१२४॥
गदामुसलनाराचशक्तितोमरहस्तया। दृप्तसिंहनिनादिन्या विनद्य प्रययौ गुहः ॥१२५॥
ततो देवाः समं सैन्यैस्तारको यत्र संस्थितः। पुरोधाय च सेनानीं यानस्था निर्ययू रवैः ॥१२६॥
स्नात्वा च षष्ठ्यां मधुमासि सम्यक् दुग्धप्रभायां प्रसभं ससैन्यः।
स्कन्दो हि यानेन ययौ निनादैर्यत्र स्थितस्तारकदानवेशः ॥१२७॥
इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे दुग्धप्रभामाहात्म्ये देवासुरस्कन्दनिर्याणं नाम त्रिपञ्चाशत्तमोऽध्यायः

---

तेजस्वी कार्तिक स्वामी सेनापतिको पदलाई प्राप्त गरेर देवताहरूका साथ बलेका अर्का ज्वालायुक्त अग्नि हुन् कि भनेझैं गरी सुशोभित हुनुभयो। त्यसपछि देवताहरूलाई आनन्दित गराउँदै दैत्यहरूको विनाशका लागि आफ्ना पार्षद र मातृकाहरूसहित कार्तिक स्वामी प्रस्थान गर्नुभयो। राक्षसलाई लक्ष्य गरेर हिँडेको त्यो डरलाग्दो सेना घण्टा, फहराएको ध्वजा, पताका, कर्नाल, शङ्ख, मादल शस्त्र-अस्त्र आदिले सुसज्जित थियो। त्यो सेना शरद्कालका तारा समूहले व्याप्त भएको आकाशजस्तै देखिन्थ्यो। त्यसपछि देवता र भूतहरूका समूहले कर्नाल, शङ्ख, दमाहा, झ्याँझरी, क्रकच, गोमुखे, आडम्बर, डिबडिबे आदि ठूला शब्द गर्ने बाजाहरू, काँसका बाजाहरू, तामाका बाजाहरू, राम्रो स्वर भएको पञ्चै बाजा र मेघजस्तो आवाज निकाल्ने आदि बाजा लगातार बजाए। त्यसपछि इन्द्र आदि देवताहरूले कार्तिक स्वामीको स्तुति गरे देवताका गन्धर्वहरूले गाना गाए, अप्सराहरू नाँचे ॥११२-११८॥

स्तुतिबाट प्रसन्न भएका कार्तिक स्वामीले "जसले तपाईंहरूसँग अत्यन्त रीस गरेका छन् ती शत्रुहरूलाई म युद्धमा मार्छु" भनेर देवताहरूलाई वर दिनुभयो। त्यसपछि ती देवताहरू विबुधश्रेष्ठ कार्तिक स्वामीबाट वर पाएर प्रसन्न भए र ती महात्माहरूले शत्रु मरे भने ठाने। ती महात्माले वर दिएपछि सबै प्राणीहरूको हर्षमिश्रित ठूलो आवाज निस्क्यो र त्यसले तीनै लोक भरियो। कार्तिक स्वामी ठूलो सेना लिएर युद्धमा दैत्यहरूलाई नाश गर्न र देवताहरूको रक्षा गर्न निस्कनुभयो। कार्तिक स्वामीका सेनाका अगाडि उहाँका अत्यन्त प्रिय निश्चय, दया, धर्म, सिद्ध, लक्ष्मी, धृति र स्मृति लागे। कार्तिक स्वामी त्रिशूल, मुग्रो हातमा लिने, डरलाग्दो सेनासित हिँड्नुभयो। उहाँको सेनामा बलेको अगुल्टो बोकेका, चित्र-विचित्र गहना लगाएका, कवच पहिरिएका, गदा, मुसल, बाण, शक्ति र तोमर हातमा लिएका सैनिकहरू थिए। त्यो सेना उन्मत्त भएको सिंहजस्तै गर्जना गर्जन्थ्यो। त्यसपछि सबै देवताहरू सेनाहरूसँगै कार्तिक स्वामीलाई अगाडि लगाएर पालकीमा चढी तारक दैत्य बसेको स्थलतिर आवाज गर्दै हिँडे। कार्तिक स्वामी सेनाहरूलाई साथमा लिएर चैत्र महिनाको षष्ठीतिथिका दिन दुग्धप्रभानदीमा विधिपूर्वक स्नान गरी जहाँ तारक नाम गरेको दैत्यराज बस्दथ्यो त्यसै स्थलतिर गर्जना गर्दै यानमा चढेर जानुभयो ॥११९-१२७॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवतखण्डको दुग्धप्रभामाहात्म्यमा तारकासुरसित युद्ध गर्न देवासुरस्कन्दको निर्याणनामक त्रिपन्नौं अध्याय पूर्ण भयो।

---

३५. ततः पारिषदैः इति न.सं.पु.पाठः। ३६. भेरीशङ्खा इति न.सं.पु.पाठः।

# चतुःपञ्चाशत्तमोऽध्यायः

## दुग्धप्रभामाहात्म्यं तारकासुरवधश्च

### लोमहर्षण उवाच

सुरसैन्यरवं श्रुत्वा तारकोऽपि प्रकोपितः । अपश्यत्[1] सुरसैन्यञ्च सिंहनादेन चाऽऽगतम् ॥१॥
स प्रेक्ष्य मन्त्रिणो दैत्यान् राक्षसांश्चैव तारकः । आहूय सर्वसैन्यानि तं दुद्राव रथेन च ॥२॥
अभ्यद्रवन्त देवास्तान्विविधायुधपाणयः । व्यद्रवन्त दिशो दैत्यास्तानालोक्य भयान्विताः ॥३॥
दृष्ट्वा च स ततः क्रुद्धः स्कन्दः तेजोबलान्वितः । शस्त्रास्त्रं भगवान् भीमं पुनः पुनरवासृजत् ॥४॥
आदधाच्चाऽऽत्मनस्तेजो हविषा हि यथानलः । हन्तव्यस्तारकश्चेति[2] स्कन्देनाऽमिततेजसा ॥५॥
तारकोऽपि महाक्रुद्धो ह्यभिदुद्राव तं भृशम् । आहूय दैत्यसैन्यानि त्रासदीनानि[3] सर्वतः ॥६॥
उल्का ज्वाला महाभीमा पपात धरणीतले । भूयः संह्लादयन्तस्ते[4] निर्घाताश्चाऽपतन् क्षितौ ॥७॥
यथान्तकालसमये सुघोराः स्युस्तथा प्रिय ! । मिथः क्षेपणशस्त्राच्च ह्यभूवञ्च महारवाः ॥८॥
ततश्चाऽभून्महद्युद्धं भीषणं शरवृष्टिभिः । नानाशस्त्रास्त्रविक्षेपैरश्माग्निवृष्टिभिस्तथा ॥९॥
ततश्च तारको दैत्यो ब्रह्मास्त्रं चालयन् रुषा[5] । देवसैन्यञ्च विद्रुत्य चाऽभिदुद्राव वासवम् ॥१०॥
तयोर्युद्धमभूत्तीव्रं परस्परजयैषिणोः । सम्प्रहारैर्मिथो युद्धे बाणवर्षैः समन्ततः ॥११॥
ब्रह्मास्त्रमुद्यतं प्रेक्ष्य तारकञ्च यथान्तकम् । स्वाभिमुखञ्च दुद्राव हित्वेन्द्रः समराङ्गणम्[6] ॥१२॥
ततः सम्प्रेक्ष्य सेनानीर्द्रावयन्तं स्वकाञ्चमूम् । शक्तिमुद्यम्य दुद्राव चोद्दिश्य तारकं भृशम् ॥१३॥

---

## अध्याय - ५४

### दुग्धप्रभाको माहात्म्य र तारकासुरवध

लोमहर्षणले भने – देवताको सेनाको शब्द सुनेर तारक नाम गरेको दैत्य पनि क्रुद्ध भयो र उसले सिंहनाद गर्दै आउन लागेको देवताहरूको सेनालाई देख्यो। त्यो देखेपछि उसले मन्त्री, दैत्य र राक्षसहरू र आफ्ना सबै सेनाहरूलाई बोलाएर रथद्वारा देवसैन्यमाथि जाइलाग्न पठायो । विभिन्न किसिमका हतियारहरू हातमा लिएका ती देवताहरूले पनि दैत्यहरूको सेनामाथि आक्रमण गरे। देवसेनाहरूलाई देखेर सबै दैत्यहरू डराउँदै दिशा-विदिशामा भागे ॥१-३॥

कार्तिक स्वामीको तेजले युक्त भएका भगवान् स्कन्द क्रुद्ध भएर बारम्बार विभिन्न भीषण शस्त्र-अस्त्रहरूको सृजना गर्न थाल्नुभयो । घिउ हालेर अग्निलाई जगाएझैं अनुपम तेज भएका भगवान् कार्तिक स्वामीले आफूलाई तेजद्वारा जगाउने अभ्यास गर्नुभयो । तारक दैत्यले पनि अत्यन्त रिसाएर डराएका दैत्यहरूलाई विभिन्न दिशाबाट बोलाएर कार्तिक स्वामीमाथि हमला गऱ्यो। डरलाग्दा उल्का र ज्वाला पृथ्वीमा झर्न थाले। त्यसैगरी वज्रहरू पनि कड्कँदै पृथ्वीमा बज्रिए। जसरी प्रलयकालमा डरलाग्दा शब्दहरू हुन्थे, त्यहाँ पनि त्यस्तै शब्द सुनिन थाल्यो। त्यहाँ परस्परमा प्रहार गरिएका शस्त्रहरूका डरलाग्दा शब्दहरू भए ॥४-८॥

त्यसपछि विभिन्न किसिमका शस्त्रअस्त्रको प्रहार, पत्थर अग्निको वृष्टि तथा बाणहरूको वर्षाले गर्दा डरलाग्दो युद्ध भयो । त्यसपछि तारकासुर नाम गरेको दैत्यले रीसले ब्रह्मास्त्र उठाएर देवताका सेनाहरूलाई भगायो अनि इन्द्रमाथि जाइलाग्यो । युद्धमा चारैतिर शस्त्रअस्त्र प्रहार र बाण वर्षा गरेर परस्परमा जित्न चाहने इन्द्र र तारकासुरको ठूलो यद्ध भयो। ब्रह्मास्त्र हातमा लिएर आफूतिर आउन लागेको यमराजजस्तो तारकासुरलाई देखेर इन्द्र लडाईं छोडेर भागे। त्यसपछि कार्तिक स्वामी आफ्ना सेनालाई भगाउन लागेको तारकासुरलाई देखेर त्यस दैत्यमाथि प्रहार गर्न शक्ति हातमा लिएर दौडनुभयो ॥९-१३॥

---

१. अदर्शत् इति न.सं.पु.पाठः ।
२. अभ्यस्तमानः शक्यस्ते इति न.सं.पु.पाठः ।
३. त्रस्तमानानि इति न.सं.पु.पाठः ।
४. संह्लादयन् तथा भूयः इति न.सं.पु.पाठः ।
५. ब्रह्मास्त्रमुद्यतो रुषा इति न.सं.पु.पाठः ।
६. वासवस्त्यज्य सङ्गरम् इति न.सं.पु.पाठः ।

सकृच्चिक्षेप शक्तिञ्च दैत्यसैन्योपरि ध्रुवम् । त्रासयन्सर्वलोकांश्च कम्पयन्मेदिनीं गिरिम् ॥१४॥
ततः कोट्यसुराः पेतुर्नियुतानि तथाऽर्बुदाः । भूयोऽपरांश्च सेनानीर्जघान भगवान्तदा ॥१५॥
दैत्येन्द्रं तारकं नाम महाबलपराक्रमम् । वृतं दैत्यायुतैर्वीरैर्बलिभिर्दशकोटिभिः ॥१६॥
महिषञ्चाऽष्टभिर्युक्तं संख्ये जघ्ने महाप्रभुः[७] । त्रिपादं चाऽयुतशतैर्जघान दशभिर्वृतम् ॥१७॥
ह्रदोदरञ्च नियुतैर्हतं दशभिराऽऽशु च । जघानानुचरैः सार्द्धं विविधायुधपाणिभिः ॥१८॥
तत्राऽकुर्वन्त सन्नादं हन्यमानेषु[८] शत्रुषु । कुमारानुचराः सिद्धिं पूरयन्तो दिशो दश ॥१९॥
ननृतुश्च ववल्गुश्च जहसुश्च मुदाऽन्विताः । शक्त्यास्य तु समुद्भूतैस्ततोऽग्निभिः समन्ततः ॥२०॥
त्रैलोक्यं सकलं त्रस्तं जृम्भमाणैश्च वह्निभिः[९] । दग्धाः सहस्रशो दैत्या नादैः स्कन्दस्य चाऽपरे ॥२१॥
पताकयाऽवधूताश्च हताः केचित्सुरद्विषः । केचिद् घण्टारवत्रस्ता न्यषीदुर्वसुधातले ॥२२॥
केचित्प्रहरणोच्छिन्ना विनिपेतुर्गतासवः । एवं सुरद्विषोऽनेकान् बलिन आततायिनः ॥२३॥
जघान समरे वीरान् कार्त्तिकेयो महाबलान् । आलोक्य देवसेनानीं शक्तिप्रक्षेपकं स्वके ॥२४॥
स ब्रह्मास्त्रञ्च चिक्षेप शक्तिमुद्दिश्य तद्रुषा । ततो रुषाऽन्वितः स्कन्दः शक्तिञ्चिक्षेप साम्प्रतम् ॥२५॥
ब्रह्मास्त्रञ्च समुद्दिश्य तैजसं दैत्यभीप्रदम् । ततो भूयो महद्युद्धमभूत्पूर्वं कदापि न ॥२६॥

---

सम्पूर्ण लोकलाई त्राहि–त्राहि पार्दै पर्वत तथा पृथ्वीलाई कम्पायमान तुल्याउने तारकासुर दैत्यको सेनामाथि कार्तिक स्वामीले शक्ति प्रहार गर्नुभयो । त्यसपछि करोडौं तथा अरबौं राक्षसहरू भूमिमा पछारिए । भगवान् कार्तिक स्वामीले त्यसबेला अरू राक्षसहरूलाई पनि मार्नुभयो । दश हजार वीर दैत्यहरू र दश करोड बलवान् दैत्यहरूले महापराक्रमी दैत्येन्द्र तारकासुलाई घेरेका थिए । कार्तिक स्वामीले ती सबै दैत्यहरूलाई मार्नुभयो ॥१४–१६॥

कार्तिक स्वामीले युद्धमा आठ करोड राँगाहरूको वध गर्नुभयो । दशौं हजार सेनाले घेरिएको त्रिपाद नाम भएको असुरलाई पनि मार्नुभयो । फेरि उहाँले विभिन्न शस्त्र–अस्त्रहरू हातमा लिने दश लाख दश हजार सेनाले घेरिएको ह्रदोदर नाम गरेको दैत्यलाई सेनासहितै तुरुन्तै मार्नुभयो । शत्रुहरू मरेपछि कार्तिक स्वामीका सेवकहरू दशै दिशामा सिद्धि भएको आवाज घन्काउँदै भयङ्कर शब्द गर्न थाले ॥१७–१९॥

कुमारका सेवकहरूमध्ये कोही नाँच्न थाले, कोही हिँड्न थाले, कोही आनन्दित भएर हाँस्न थाले, कुमारको शक्तिबाट पैदा भएको ज्वालाले चारैतर्फ ढाक्यो ।अग्निका ज्वालाहरू फैलिँदा स्वर्ग, मर्त्य र पातालका सम्पूर्ण भागमा हाहाकार मच्चियो । कार्तिक स्वामीका भयानक शब्दले अरू हजारौं दैत्यहरू लडे । केही दैत्यहरू पताकाको फर्फराहटले मरे, केही घण्टको शब्दले मूर्छित भएर भूमिमा पछारिए ॥२०–२२॥

केही शस्त्रको प्रहारले काटिएर निष्प्राण भई जमिनमा पछारिए । यसरी अत्यन्त बलिया कार्तिक स्वामीले आततायी र वीर राक्षसहरूलाई युद्धमा मार्नुभयो । महात्मा कार्तिक स्वामीले आफ्नो पक्षमाथि शक्ति प्रहार गरेको देखेर रिसाउँदै त्यस शक्तिलाई काट्न रीसले ब्रह्मास्त्र प्रहार गर्नुभयो । त्यसपछि रिसाएर कार्तिक स्वामीले दैत्यहरूमाथि शक्ति प्रहार गर्नुभयो अनि फेरि अत्यन्त भयानक र तेजिलो ब्रह्मास्त्र दैत्यहरूलाई ताकेर हिर्काउनुभयो । त्यति ठूलो युद्ध कहिल्यै पनि भएको थिएन ॥२३–२६॥

---

७. निजघ्नवान् प्रभुः इति न.सं.पु.पाठः ।
८. विपुलं नादं वध्यत्सु इति न.सं.पु.पाठः ।
९. त्रासितं सर्वं जृम्भमानाभिरेव च इति न.सं.पु.पाठः ।

घर्षणैर्मिथ आघातैः शक्तिब्रह्मास्त्रयोश्च खे। जघ्नतुस्तौ मिथो व्योम्नि पक्षिणाविव खे भृशम् ॥२७॥
चिह्लौ गृध्रौ यथा वज्रौ काकाविव च सङ्कुलौ। तस्य प्राप्ते तपोह्रासे शीघ्रं व्योम्नो ययौ तदा ॥२८॥
ब्रह्मास्त्रं ब्रह्मलोकं वै युद्धं त्यक्त्वाऽसुरञ्च तम्। शक्तिश्चाऽपि ततो व्योम्नो युद्धं त्यक्त्वा च सत्वरम् ॥२९॥
कुमारस्याऽन्तिकं याता भासयन्ती पुनर्दिशः[१०]। तारकोऽपि ततो दृष्ट्वा ब्रह्मास्त्रञ्च तिरोहितम् ॥३०॥
कुमारेण धृतां शक्तिं दुद्रावाऽभिमुखं गिरौ। क्रौञ्चपर्वतमाश्रित्य देवसङ्घैश्च संयुतः ॥३१॥
तमभ्ययान् महासेनः सुरशत्रुमुदारधीः। स भयात् कार्त्तिकेयस्य क्रौञ्चपर्वतमीयिवान् ॥३२॥
क्रौञ्चनामा महाशैलस्तं विलङ्घ्य च सत्वरम्। अलङ्घ्यं सर्वसत्त्वानां दुद्राव तारकासुरः ॥३३॥
पलायमानं[११] सम्प्रेक्ष्य तारकं दानवेश्वरम्। कुमारोऽनुययौ शीघ्रं शक्तिमुद्यम्य कोपवान् ॥३४॥
ततो बिभेद शक्त्या तं क्रौञ्चाद्रिं स्कन्द आशु च। ततः क्रौञ्चो महामन्युः क्रौञ्चनादनिनादितः ॥३५॥
शक्त्या बिभेद भगवान् प्रियया वह्निदत्तया[१२]। स सानुस्कन्धशवलं त्रस्तवानरवारणम् ॥३६॥
प्रोड्डीनोद्भ्रान्तविहगं निष्क्रान्तानेकपन्नगम्[१३]। गोलाङ्गूलर्क्षसङ्घैश्च विद्रुतै[१४]रनुनादितम् ॥३७॥
कुरङ्गगतिनिर्घोषनिनादितवनान्तरम्। विनिष्पतद्भिः शरभैः सिंहैश्च सहसा द्रुतैः ॥३८॥
शोच्यामपि दशां प्राप्तो रराज च स पर्वतः। विद्याधराः समुत्पेतुस्तस्य शृङ्गनिवासिनः ॥३९॥
किन्नराश्च समुद्विग्नाः शक्तिपातरवोद्धताः। ततो दैत्या विनिष्पेतुः शतशोऽथ सहस्रशः ॥४०॥
प्रदीप्तात् पर्वतश्रेष्ठाद्विचित्राभरणस्रजः। तान्निजघ्नुरतिक्रम्य कुमारानुचरा मृधे ॥४१॥

---

कुमारको शक्ति र ब्रह्मास्त्रको परस्पर सङ्घर्षको आघातले गर्दा आकाशमा दुईवटा पक्षीको युद्धजस्तो परस्पर हानाहान भयो। चील र गिद्ध, काग र बकुल्लोजस्तै गरी धेरै समयसम्म आपसमा आघात-प्रतिघात गरी युद्ध गर्दा तपस्याको प्रभाव क्षीण भएको जानेर ऊ ब्रह्मास्त्रको सङ्घर्ष छाडेर ब्रह्मलोक गयो। कुमारको शक्ति पनि युद्धलाई छाडेर दशै दिशलाई झलमल पार्दै कार्तिक स्वामी भएको ठाउँमा आइपुग्यो। तारकासुर पनि ब्रह्मास्त्रलाई निष्फल भएर फर्किएको र शक्तिलाई कार्तिक स्वामीले समातेको देखी अगाडि पर्वततिर भाग्यो। देवसमूहभित्र रहेर ऊ क्रौञ्चपर्वतको आश्रय लिन पुग्यो ॥२७-३१॥

उदार बुद्धि भएको देवताको शत्रु तारकासुर कार्तिक स्वामीको डरले क्रौञ्चपर्वतमा गएर लुकेको थियो। त्यसपछि तारकासुर कुनै प्राणीले पनि नाघ्न नसक्ने क्रौञ्च नामक पर्वतलाई नाघेर भाग्यो। त्यस तारकासुर दैत्यलाई भाग्न लागेको देखेर कार्तिक स्वामीले तुरुन्तै शक्ति उज्याएर लखेट्नुभयो। त्यसपछि कार्तिक स्वामीले क्रौञ्चपर्वतलाई तुरुन्त शक्तिले हिर्काउनुभयो। कन्याङकुरुङ चराको जस्तै आवाज गर्दै क्रौञ्चपर्वत अत्यन्त रिसायो। त्यसपछि कार्तिक स्वामीले अग्निले दिएको आफ्नो प्यारो शक्तिद्वारा त्यस क्रौञ्चपर्वतलाई फोर्नुभयो। त्यस अवस्थामा सम्पूर्ण बाँदर र हात्तीलाई त्रास पैदा गर्ने खालको ठूलो आवाज आयो ॥३२-३६॥

पक्षीहरू विह्वल हुँदै चारैतिर उडे। गुफा, ओडारमा सुतिरहेका सर्पहरू हडबडाएर निस्किए। ढेडु, भालु आदि जन्तुहरू कोलाहल गर्दै चारै दिशातिर भाग्न थाले। त्यहाँ ठूलो आवाज घन्कियो। मृगहरू चित्कार गर्दै वनको मध्यभाग थर्काउन थाले। आकाशमा उडेका सलह र गुफाबाट निस्किएका बाघहरूले गर्दा त्यो पर्वत अत्यन्त शोचनीय अवस्थामा पुगेता पनि त्यो क्रौञ्चपर्वत निकै सुशोभित भएको थियो। त्यसका शिखरमा रहेका विद्याधरहरू पनि उडेर अन्तै गए ॥३७-३९॥

शक्तिको प्रहारले गर्दा पैदा भएको भीषण शब्दले उद्विग्न बनेका किन्नरहरू पनि आकाशमा उडे। त्यसपछि सयकडौं, हजारौं दैत्यहरू त्यहाँबाट निस्किए। त्यस लडाईंमा विभिन्न किसिमका वस्त्र, आभूषण र हतियारले सुसज्जित र चहकिलो बनेको त्यस पर्वतबाट निस्किएका कार्तिक स्वामीका अनुचरहरूले ती दैत्यहरूलाई आक्रमण गरेर मारिदिए ॥४०-४१॥

---

१०. भूयः समाययौ ज्वलन् दिशः इति न.सं.पु.पाठः।
११. पलायन्तञ्च इति न.सं.पु.पाठः।
१२. प्रिये भूयोऽग्निदत्तया इति न.सं.पु.पाठः।
१३. विनिष्क्रान्तितपन्नगम् इति न.सं.पु.पाठः।
१४. द्रवद्भिः इति न.सं.पु.पाठः।

ततश्च भगवान् क्रुद्धः प्रहर्तुं तारकं प्रिय ।। शीघ्रं शक्तिं समादाय तच्छिद्रेण विनिर्ययौ ॥४२॥
ततः शक्त्या जघानाऽऽशु सेनानीस्तारकासुरम्। उरोदेशे समुद्दिश्य सिंहनादं नदन् भृशम् ॥४३॥
शक्त्या बिभेद दैत्येन्द्रवक्षःस्थले महामनाः। पुरा देवासुरे युद्धे वृत्रं देवपतिर्यथा ॥४४॥
बहुधा चैकधा चैव कृत्वाऽऽत्मानं महाबलः। शक्तिः क्षिप्ता रणे तस्य पाणिमेति पुनः पुनः ॥४५॥
तस्य वक्षःस्थलं भित्त्वा पीत्वा च[१५] शोणितं मुहुः ॥ शक्तिः समाययौ भूयः कुमारस्य करोपरि ॥४६॥
व्यसुर्भूमौ पपाताऽऽशु तारकः सहसा स्वरैः। कम्पयँश्च महीं सर्वां सशैलवनकाननाम्[१६] ॥४७॥
ततो दुन्दुभयो नेदुर्दिवि शङ्खाश्च सुस्वरम्। मुमुचुर्देवयोषाश्च पुष्पवर्षमनुत्तमम् ॥४८॥
दिव्यगन्धमुपादाय ववौ पुण्यश्च मारुतः। गन्धर्वास्तुष्टुवुश्चैव यज्वानश्च महर्षयः ॥४९॥
पुष्पवृष्टिं कुमारे च चक्रुः[१७] साध्विति सुस्वरम्। वाद्यानि च भृशं नेदुर्जयध्वनिरभूत्[१८] पुनः ॥५०॥
तत्र देवाः सगन्धर्वा ब्रह्मादयः समाययुः। अपूजयन् स्तवैः स्कन्दमभिवाद्य मुहुर्मुहुः।
केचिदेनं व्यवस्यन्ति पितामहसुतं प्रभुम् ॥५१॥
सनत्कुमारं सर्वेषां ब्रह्मयोनिं तमग्रजम्। केचिन्महेश्वरसुतं केचित्पुत्रं विभावसोः ॥५२॥
उमायाः कृत्तिकानाञ्च गङ्गायाश्चेति केचन[१९]। एकधा च द्विधा चैव चतुर्द्धा च महाबलम् ॥५३॥
योगानामीश्वरं देवं शतशोऽथ सहस्रशः। ततः स भगवान् देवो निहत्य विबुधद्विषः ॥५४॥

---

त्यसपछि भगवान् कार्तिक स्वामी तारकासुर मार्न भनेर झोक्किँदै शक्ति हातमा लिएर क्रौञ्च पर्वतको छिद्रबाट निस्कनुभयो। त्यसपछि कार्तिक स्वामीले सिंहनाद गर्दै तारकासुरको छातीमा ताकेर शक्ति नाम गरेको अस्त्र प्रहार गर्नुभयो। जसरी अघि इन्द्रले देवासुरसङ्ग्राममा वृत्रासुरलाई मारेका थिए त्यसैगरी कार्तिक स्वामीले दैत्येन्द्र तारकासुरको छातीमा महान् आत्मबल देखाउँदै शक्ति प्रहार गर्नुभयो। बलशाली कार्तिक स्वामीले एकै किसिम वा अनेक किसिमले युद्धमा शक्तिको प्रहार गर्नुभयो। त्यो शक्ति लक्ष्यभेदन गरेपछि फर्किएर बारम्बार उहाँको हातमा आउँथ्यो। अन्त्यमा शक्ति नाम गरेको त्यस अस्त्रले तारकासुर दैत्यको छाती फोर्‍यो, त्यसको रगत पियो र कुमारको हातमा आयो ॥४०-४६॥

हे आर्य ! त्यसपछि पर्वत तथा वनसहितको पृथ्वीलाई थर्काउँदै हाहाकार मच्चाएर तारकासुर भूमिमा पछारियो र मर्‍यो। अनि आकाशमा मीठो स्वरले दमाहा, शङ्ख आदि बाजाहरू बजे, देवीहरूले उत्तम पुष्पवृष्टि गरे ॥४७-४८॥

अन्त्यमा सुगन्धित दिव्य गन्ध लिएर वायु वहन थाल्यो, गन्धर्व, याजक र महर्षिहरू कार्तिक स्वामीको स्तुति गर्न लागे। कार्तिक स्वामीमाथि चारैतर्फबाट पुष्पवृष्टि भयो, मीठो स्वरमा सबैले साधु-साधु भनेर धन्यवाद दिन थाले। अनेकथरी बाजाहरू खूबसित बजे, दशै दिशामा जय-जयकार घन्कियो। त्यस युद्धक्षेत्रमा गन्धर्व, ब्रह्मा आदि देवताहरू आएर बारम्बार नमस्कार गर्दै कार्तिक स्वामीको पूजा र स्तुति गर्न थाले। कार्तिक स्वामीलाई कसैले पितामहका पुत्र ठान्थे, कोही सम्पूर्ण प्राणीका ब्रह्मयोनि सनत्कुमार भन्ने गर्थे, कसैले उहाँलाई महेश्वरका पुत्र मानेका थिए, कोही अग्निपुत्र सम्झन्थे, कसैले उहाँलाई गौरीपुत्र र कसैले कृतिकाका छोरा भन्थे, कसैले कार्तिक स्वामीलाई गङ्गाका छोरा भनेका थिए। यसरी एक किसिमले, दुई किसिमले, चार किसिमले र महाबली योगेश्वर कार्तिक स्वामीका करोडौं, हजारौं नामहरू भए ॥४९-५४॥

---

१५. प्रपास्य इति न.सं.पु.पाठः।
१६. सहार्य्य इति न.सं.पु.पाठः।
१७. साधु इति न.सं.पु.पाठः।
१८. जयशब्दमभूत् इति न.सं.पु.पाठः।
१९. गङ्गायाश्च वदन् पुनः इति न.सं.पु.पाठः।

सभाज्यमानो विबुधैः परं हर्षमवाप ह। क्रौञ्चस्तेन विनिर्भिन्नो दैत्याश्च शतशो हताः ॥५५॥
सर्वलोकैः स्तुतः स्कन्दः शुशुभेऽतुलशक्तिमान्[२०]। एवं प्रभावो भगवान्शुशुभे चाऽधिकं प्रिय ! ॥५६॥
सौर्याद् द्विगुणयोगेन तेजसा यशसा श्रिया। ततो देवा ययुः स्वर्गं राज्यञ्चक्रुः सुनिश्चिताः ॥
कुमारस्य प्रसादाद्वै हर्षनिर्भरमानसाः ॥५७॥
श्रुता मया ते कथिता प्रशंसा दुग्धाम्बुनद्याः शिखिवाहनाद्वै।
तस्याऽद्भुतं वै चरितं प्रशस्तं प्रोक्तञ्च भूयः शृणु तेन यन्मे ॥५८॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे दुग्धाभामाहात्म्ये तारकवधो नाम चतुःपञ्चाशत्तमोऽध्यायः ॥५४॥

---

त्यसपछि भगवान् कार्तिक स्वामी देवताका शत्रु दानवहरूलाई मारी क्रौञ्चपर्वतको समेत भेदन गरेर आनन्दित हुनुभयो, देवताहरूले उहाँको ठूलो सम्मान गरे। सबै प्राणीहरूले उहाँको स्तुति गरे, उहाँ अत्यन्त अतुलनीय शोभाले सुशोभित हुनुभयो। यस्ता प्रभावशाली भगवान् कार्तिक स्वामी सूर्यको भन्दा पनि दोब्बर तेज, कीर्ति र शोभयुक्त बन्नुभयो। त्यसपछि कार्तिक स्वामीको अनुग्रहबाट अत्यन्त प्रसन्न मन भएका देवताहरू स्वर्गमा गए र स्थिर भई राज्य गर्न थाले ॥५५-५७½॥

हे मुनिहरू हो ! यो दुग्धप्रभा नदीको माहात्म्य मैले मयूरवाहन कार्तिक स्वामीबाट सुनेको थिएँ र मैले त्यो प्रशंसनीय अद्‌भुत चरित्र तपाईंहरूलाई सुनाएँ। अब फेरि उहाँले मलाई भन्नुभएको कुरा सुन ॥५८॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डको दुग्धप्रभामाहात्म्य र तारकासुरको वधनामक चौवन्नौं अध्याय पूर्ण भयो।

---

२०. समनूपमः इति न.सं.पु.पाठः।

# पञ्चपञ्चाशत्तमोऽध्यायः

## कृष्णप्रभामहिमा

स्कन्द उवाच

माहात्म्यन्ते प्रवक्ष्यामि कृष्णाभायाः शृणु ध्रुवम्। श्रवणात्पूयते गात्रं बहुपापैर्युतञ्च तत् ॥१॥
कुरुते विष्णुरद्यापि वासं तस्याञ्च सन्ततम्। स्थावरत्वेन हेतोश्च कृष्णाभायां घटोद्भव ॥२॥

अगस्त्य उवाच

कथं स्थावरतां प्राप्तं भगवता च विष्णुना। पालकेन च संहर्त्रा सृजता जगतो[१] विभो ॥३॥
केनैव हेतुना विष्णुर्वासं तस्याञ्चकार सः। चित्रं मे जायते स्कन्द ! वदतु कारणं च मे[२] ॥४॥

स्कन्द उवाच

जालन्धरस्य पत्नी या वृन्दा नाम पतिव्रता। तां छन्दयन् पुरा विष्णुस्तत्प्रियाङ्गं च भुक्तवान्[३] ॥५॥
विष्णोश्छायां ददर्शार्या शङ्खचक्रगदाब्जकाम्। प्रदधानाञ्चतुर्बाहून् सुरत्यामाशु धर्षिता ॥६॥
स्वमात्मानं ज्ञातवती छलितं[४] विष्णुना तदा। दुःखातुरा ददौ शापं विष्णवे लोकजिष्णवे ॥७॥

वृन्दोवाच

विष्णो ! केन प्रवृत्तस्त्वं[५] छिद्रान्वेषणतत्परः। परदारानपि ज्ञात्वा व्याजेनच्छन्दसे कथम् ॥८॥
एकाकिनीञ्च मां साध्वीं यतः छलसि[६] मौनतः। तस्मात्त्वं स्थावरो भूयाः परदारविमर्दनात् ॥९॥
रजोदोषाच्च मौर्ख्याच्च श्रीमदान्धबलादपि[७]। मर्दन्ति परदारान् ये तेऽन्धकूपे पतन्ति वै[८] ॥१०॥

---

## अध्याय - ५५

### कृष्णप्रभाको महिमा

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! अब म तपाईलाई कृष्णागण्डकीको माहात्म्य बताउँछु, सुन्नुहोस्। अनेक पाप कर्मले युक्त भएको व्यक्तिको शरीर पनि कालीगण्डकीको माहात्म्य सुन्नाले पवित्र हुन्छ किनभने स्वयं विष्णु भगवान् शालग्राम शिला भएर आज पनि तिनै कालीगण्डकी नदीमा वास गरिरहनुभएको छ ॥१-२॥

अगस्त्यले भन्नुभयो – संसारको पालनपोषण गर्ने, सृष्टि, स्थिति र प्रलयका कर्ता भएर पनि किन भगवान् विष्णुलेत्यस नदीमा वास गर्नुपऱ्यो ? मलाई अचम्म लागेको छ। हे कार्तिक स्वामी ! त्यसको कारण स्पष्ट बताउनुहोस् ॥३-४॥

कार्तिक स्वामीले भन्नुभयो – वीर जालन्धरकी पतिव्रता वृन्दा नाम गरेकी पत्नीलाई छलेको हुँदा भगवान् विष्णुले कालीगण्डकीमा शिला भएर बस्नुपरेको हो। रतिबाट पीडित वृन्दाले सराप दिइसकेपछि विष्णुका हातमा शङ्ख, चक्र र पद्मको चिह्न धारण गर्ने विष्णुको मूर्ति देखेकी हुनाले विष्णुले आफूलाई छलेका रहेछन् भन्ने कुरा उनले बुझिन्। त्यसपछि दुःखित हुँदै वृन्दाले संसारलाई वशीभूत पार्ने विष्णुलाई पनि सराप दिएकी हुन् ॥५-७॥

वृन्दाले भनिन् – हे विष्णु ! तिमी अर्काको छिद्रान्वेषण गर्ने काममा किन लाग्यौ ? सधैं ढाँट्ने तिम्रो बानी रहेछ। परस्त्रीमाथि गमन गर्नु भनेको महापाप हो भनेर जान्दा-जान्दै पनि तिमीले मलाई छलेर किन मेरो सतीत्व हरण गऱ्यौ ? एक्लै भएको बेला पारी मौन भएर म पतिव्रतालाई छल्यौ, त्यसैले परस्त्रीगमनको पापले गर्दा तिमीलाई ढुङ्गा भएर बस्नुपरोस्। रजोगुणका दोषले, मुर्ख्याईंका कारणले, धनको मादले र बलको घमण्डले जुन मानिस परस्त्रीमाथि गमन गर्छन् ती व्यक्तिहरू नरकमा गएर पर्छन् ॥८-१०॥

---

१. जगतत्सर्वं हर्त्रा च सृजता इति न.सं.पु.पाठः। २. तत्कारणं वदस्य मे इति न.सं.पु.पाठः। ३. प्रधारयन् इति न.सं.पु.पाठः।
४. छद्मिनम् इति न.सं.पु.पाठः। ५. ववृत्ते त्वम् इति न.सं.पु.पाठः। ६. छद्मसि इति न.सं.पु.पाठः।
७. श्रीमदान्धाद् इति न.सं.पु.पाठः। ८. ते पतन्ति च नारके इति न.सं.पु.पाठः।

स्कन्द उवाच

तस्याः शापं समाकर्ण्य तदा विष्णुरचिन्तयत् । क्षणं व्याप्य ययौ स्नातुं कृष्णाभाया जलोत्तमे ॥११॥
तस्यां सस्नौ महाविष्णुः सर्वलोकहिताय च । अस्यां मूर्तौ ततो भूयश्चाऽवतर्त्तुं मनो दधे ॥१२॥
शापेन प्रेरितो विष्णुः कृष्णाभायां स्थितो यदा । आहूय विश्वकर्माणं निर्माणाय ह्युवाच च ॥१३॥

विष्णुरुवाच

विश्वसृक् ! त्वञ्च मे मूर्त्तिं निर्माहि स्वर्णिमोपलैः[९] । अहं भूत्वा च कीटो वै कृष्णाभाभ्यन्तरे स्थितः ॥१४॥
यावन्तश्चाऽवतारा मे भविष्यन्ति च विश्वसृक् । तावन्तो भिन्नचिह्नैस्त्वञ्चक्रैश्च रचया[१०]ऽनिशम् ॥१५॥

स्कन्द उवाच

इत्युक्त्वा च महाविष्णुर्विश्वसृजं तदा मुने । स कृष्णाभामृते सार्द्धमुन्ममज्जाऽऽशु तेन च ॥१६॥
विष्णुर्बभूव तस्यां वै शालग्रामशिलातनुः । सर्वलोकहितार्थाय तस्याः शापेन निश्चितम् ॥१७॥
वज्रकीटः ससर्जाऽऽशु चक्रैर्नानासुलक्ष्मभिः । जाम्बूनदमयैः शुभ्रैरवतारान् पृथक् पृथक् ॥१८॥
ततो लोका पूजयन्ति[११] वाञ्छितार्थप्रलब्धये । मान्यतापूर्वकं धृत्वा[१२] भक्तिभिर्ज्ञानिनो मुने ॥१९॥

अगस्त्य उवाच

किं फलं पूजनात् स्कन्द ! शालग्रामस्य चक्रिणः । कीदृशानि च रूपाणि तस्य[१३] विष्ण्वात्मनो विभो ॥२०॥
तद्रूपाणां च माहात्म्यं वर्णांश्चैव[१४] विशेषतः । तत्सर्वं श्रोतुमिच्छामि वद मे सर्ववित् ! प्रभो ॥२१॥

स्कन्द उवाच

द्वारस्थाने समे चक्रे ! विद्यते नान्तरीयके । वासुदेवः स विद्याद्वै शुक्लप्रभः सुशोभनः ॥२२॥
दीर्घाकारो बहुच्छिद्रः सूक्ष्मचक्रः सुशोभनः । प्रद्युम्नश्च स विज्ञेयः पीताभो रक्तवर्णतः ॥२३॥

---

कार्तिक स्वामीले भन्नुभयो – वृन्दाको त्यो सराप सुनेर विष्णुले एकछिन चिन्ता गर्नुभयो र कालीगण्डकीको जलमा स्नान गर्न जानुभयो। समस्त लोकको हित गर्नका लागि विष्णुले कालीगण्डकीको जलमा स्नान गरेर तिनै कालीगण्डकीको जलभित्र मूर्त भई अवतार लिने विचार गर्नुभयो । वृन्दाको सरापबाट प्रेरित भएर जब विष्णुले कालीगण्डकीमा स्नान गर्नुभएको थियो, त्यसैबेला विश्वकर्मालाई बोलाएर आफ्ना अरू मूर्ति बनाउनका लागि निर्देशन दिनुभयो ॥११-१३॥

विष्णुले भन्नुभयो – हे विश्वकर्मा ! तिमी सुनौला ढुङ्गाले मेरा मूर्तिहरू बनाऊ। वज्रकीट नाम गरेको कीरो भएर कालीगण्डकीभित्र बसी शालग्राम शिलाको निर्माण गर। कालीगण्डकीमा जति शिला छन्, तिनीहरूमा मेरा जति अवतार हुनेछन् तदनुसार फरक-फरक चिह्न भएका चक्रहरू अङ्कित गराई अलग-अलग शालग्राम निरन्तर बनाऊ ॥१४-१५॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! महाविष्णुले विश्वकर्मालाई यसरी सम्झाएर उनै विश्वकर्माका साथ कालीगण्डकीमा स्नान गर्नुभयो। वृन्दाको सरापले गर्दा सम्पूर्ण प्राणीको हितका निमित्त भगवान् विष्णु शालग्रामको शिलाका रूपमा परिणत हुनुभयो। विश्वकर्माले पनि वज्रकीट भएर सुवर्णजस्ता पहेँला, सेता आदि अनेकौँ चिह्न र चक्रले युक्त भएका विभिन्न विष्णुका अवतारस्वरूप मूर्तिहरूको सृजना गरे। हे अगस्त्य मुनि ! त्यसै समयदेखि आफ्नो इच्छालाई पूर्ण गर्न मानिसहरू भक्तिपूर्वक शालग्राम शिला लिएर उनको पूजा गर्छन् ॥१६-१९॥

अगस्त्य मुनिले भन्नुभयो – हे कार्तिक स्वामी ! चक्र भएको शालग्राम शिलाको पूजा गर्नाले के फल प्राप्त हुन्छ ? विष्णुस्वरूप शालग्राम शिलाका रूपहरू के-कस्ता छन् ? तिनीहरूको माहात्म्य र विशेष गरी वर्ण कस्तो छ ? म सबै सुन्न चाहन्छु ॥२०-२१॥

कार्तिक स्वामीले भन्नुभयो – जसको बाहिरी द्वारभागमा पृथक् पृथक् रूपले रहेका समान किसिमका चक्रहरू छन्, सेतो वर्ण छ र सुन्दर स्वरूप छ भने त्यस शालग्रामलाई भगवान् वासुदेव भनेर जान्नुपर्छ। लामो आकार भएको, धेरै छिद्र भएको र सूक्ष्म चक्र भएको, अत्यन्त राम्रो एवं पहेँलो र केही रातोजस्तो वर्ण भएको शालग्रामलाई प्रद्युम्न भगवान्को मूर्ति भनिएको छ ॥२२-२३॥

---

९. स्वर्णोपलैः सुनिर्मय इति न.सं.पु.पाठः । १०. निर्मया इति न.सं.पु.पाठः । ११. प्रपूजन्ति इति न.सं.पु.पाठः ।
१२. मान्यपूर्वं समादाय इति न.सं.पु.पाठः । १३. तेषाम् इति न.सं.पु.पाठः । १४. तेषामेव च माहात्म्यं वर्णानि च इति न.सं.पु.पाठः ।

रेखात्रयेण संयुक्तः पद्मचिह्नैः सुलाञ्छितः । अनिरुद्धः स विज्ञेयो नीलवर्णोऽतिशोभनः ॥२४॥
श्यामं नारायणं विद्धि नाभिचक्रं समुन्नतम् । दीर्घरेखासमायुक्तो दक्षिणो शुषिरान्वितः ॥२५॥
दीर्घो दक्षिणवामांशो मत्स्यः कपिशवर्णभृत् । विन्दुत्रयसमायुक्तश्चक्रशङ्खाङ्कितः स्मृतः ॥२६॥
तत्त्वलक्षणसम्पूर्णः कूर्मो कुवलयाकृतिः । वराहो लाञ्छितश्चक्रैर्विषमैः सुस्थितैः शुभैः ॥२७॥
इन्द्रनीलनिभः स्थूलस्त्रिरेखाचिह्नितः शुभः । कपिलो नरसिंहः स्यात्पृथक् चक्रैस्तथोन्नतैः ॥२८॥
ब्रह्मचर्येण पूज्योऽसौ चाऽन्यथा विघ्नदो भवेत् । वामपार्श्वे स्थिते चक्रे कृष्णवर्णे सविन्दुके ॥२९॥
लक्ष्मीनृसिंहः स ज्ञेयो भुक्तिमुक्तिफलप्रदः । कदम्बकुसुमाकारो रेखापञ्चकभूषितः ॥३०॥
वर्त्तुलश्चाऽतिह्रस्वश्च वामनः परिकीर्त्तितः । लक्षितश्च शुभैः पीतैश्चापपरशुलाङ्गलैः ॥३१॥
रामो रामश्च रामश्च ज्ञेयो मृत्युहरः क्रमात् । अतसीपुष्पसङ्काशो बिन्दुना सुविभूषितः ॥३२॥
सुदर्शनो महाश्यामो बहुभूतिसुखप्रदः । वामपार्श्वे गदाचक्रे रेखा चैव तु दक्षिणे ॥३३॥
दामोदरस्तथा स्थूलो मध्ये चक्रं प्रतिष्ठितम् । परमेष्ठी तु शुक्लाभः पद्मचक्रसमन्वितः ॥३४॥
बिम्बाकृतिः क्वचित्पीतः पृष्ठे चैव सुलाञ्छितः । कृष्णवर्णस्तथा विष्णुः स्थूलचक्रे सुशोभने ॥३५॥
यस्य मध्ये गदाकारा दृश्यन्ते पञ्चरेखिकाः । श्रीधरोऽसौ तथा देवश्चिह्नितो वनमालया ॥३६॥
कदम्बकुसुमाकाराश्चोर्ध्वरेखाश्च पादयोः । वामपार्श्वे स्थिता रेखास्तथा चैव तु दक्षिणे ॥३७॥
स च त्रिविक्रमो देवः श्यामवर्णो महाद्युतिः । हयग्रीवोऽङ्कुशाकारो रेखाश्चक्रसमीपगाः ॥३८॥
हरिवर्णसमायुक्तो बहुबिन्दुसमन्वितः । गदाधरस्त्रिरेखाभिस्त्रिसूक्ष्मो मध्यदेशतः ॥३९॥

---

तीन रेखा भएको, कमलका जस्ता चिह्नले युक्त भएको, नीलो वर्णको र अत्यन्त राम्रो शालग्रामलाई अनिरुद्ध भगवान्को मूर्ति मानिएको छ । यसैगरी श्यामवर्ण भएको, नाभिमा चक्र भएको, अग्लो खालको, लामो रेखाले युक्त भएको र दायाँपट्टि प्वाल परेको शालग्रामलाई भगवान् नारायणको मूर्ति मानिन्छ । दायाँ र बायाँपट्टिको काँध लामो भएको, कैलो वर्णको शिलालाई मत्स्यावतार भनिएको छ । तीन विन्दुयुक्त शङ्ख र चक्रले सुशोभित २४ लक्षणले युक्त (भूमण्डलको आकारको) शिलालाई कूर्मावतार भनिएको छ । यसरी नै विषम संख्यामा राम्रा चक्रले युक्त भएको बँदेलको आकारको शिलालाई वराह अवतार शालग्राम मानिएको छ ॥२४-२७॥

इन्द्रनीलमणिजस्तै चम्किलो ठूला-ठूला तीनवटा रेखाले युक्त भएको, कैलो रङ्गको, छुट्टाछुट्टै दुईवटा अग्ला चक्र भएको शालग्राम शिला भगवान् नृसिंहको मूर्ति हो । यो शालग्रामको पूजा ब्रह्मचर्य व्रत धारण गर्ने व्यक्तिले मात्र गर्नुपर्दछ अन्यथा विघ्न पर्छ । विन्दुयुक्त बायाँपट्टि सुन्दर वर्ण भएका दुईवटा चक्र भएको, कालो वर्णको शालग्राम शिला लक्ष्मीनृसिंहको हो । यसको पूजा गर्नाले भुक्ति तथा मुक्ति प्राप्त हुन्छ । कदमको फूलजस्तो पाँच रेखाले युक्त भएको, बाटुलो र सबैभन्दा सानो शालग्रामलाइ वामनको स्वरूप मानिएको छ ॥२८-३०॥

सुन्दर शङ्ख आदि चिह्नले युक्त भएको, पहेँलो वर्णको, बाण, बञ्चरो र हलो चिह्नले सुशोभित शालग्राम शिलालाई क्रमशः राम, परशुराम तथा बलरामको स्वरूप मानिएको छ । यी शिलाको पूजाबाट अकालमृत्युको हरण हुन्छ। सुदर्शन नाम गरेको शालग्राम शिलाको आकार आलसको फूलजस्तो अत्यन्त नीलो वर्ण र विन्दुले युक्त भएको हुन्छ। विभिन्न किसिमका ऐश्वर्य र सुख यसले दिन्छ। बायाँतिर गदा, चक्र र दायाँतिर रेखा भएको ठूलो आकारको शालग्रामलाई दामोदर भनिएको छ ॥३१-३३॥

पद्म र चक्रले युक्त, सेतो वर्ण भएको शिलालाई ब्रह्माको मूर्ति भनेर जान्नुपर्छ । गोलकाँक्रीको जस्तो आकार भएको र कहीं कहीं पहेँलो वर्ण भएको, कालो वर्ण पिठ्यूँतिर भएको, मोटा-मोटा सुन्दर दुई चक्र भएको शालग्रामलाई विष्णुको मूर्ति भनिएको छ। जुन शिलाको बीचमा गदाका आकारका पाँचवटा रेखा रहेका हुन्छन् र वनमालाको चिह्नले पनि अङ्कित भएको हुन्छ, त्यस्तो शालग्राम श्रीधरको मूर्ति हो । कदमको फूलजस्तो चिह्न भएको, तलतिर सेतो वर्ण भएको, ठाडो रेखाले युक्त भएको तथा दायाँ बायाँतिर पनि एक-एकवटा रेखा भएको चिल्लो श्यामवर्णको त्रिविक्रमको मूर्ति भनिन्छ। हयग्रीवको शिलामा अङ्कुश आकारको चिह्न हुन्छ। चक्रको नजिकैबाट रेखाहरू गएका हुन्छन्, हरियो वर्णको हुन्छ र प्रशस्त थोप्लाहरू हुन्छन्। तीन रेखा र मध्यभागमा तीनवटा चिह्न भएको गदाधरको मूर्ति हुन्छ ॥३४-३९॥

नानावर्णसमायुक्तो नागभोगेन चिह्नितः । अनेकमुखसंयुक्तश्चाऽनन्तो नाम नामतः ॥४०॥
दक्षिणावर्त्तप्राकारा वनमालाविभूषिता । सा शिला कृष्णवर्णाभा धनधान्यसुखप्रदा ॥४१॥
चतस्रो यत्र दृश्यन्ते रेखाः पार्श्वसमीपगाः । द्वे चक्रे मध्यदेशे च सा शिला स्याच्चर्तुमुखा ॥४२॥
कूर्मचक्रमये भागे मध्यभागे खुरान्वितः । शिवनाभः इति ख्यातो दुर्ल्लभः सर्वकामदः ॥४३॥
चक्रैश्चतुर्भिः संयुक्तः[१५] पङ्कजेन समन्वितः । आभ्यन्तरे खुरैर्बाह्ये लाञ्छितो वनमालया ॥४४॥
लक्ष्मीनारायणो देवो गृहे यस्य च विद्यते । तस्य गृहे न दारिद्र्यं शोकदुःखं न वै भवेत् ॥४५॥
न चौराग्निभयं तत्र नापि दुर्ग्रहपीडनम्[१६] । अन्ते मोक्षं लभेतैतच्छालग्रामस्य पूजनात् ॥४६॥
विदिक्षु दिक्षु सर्वासु यस्य हि दृश्यते मुखम् । भुक्तिमुक्तिप्रदो नित्यं विज्ञेयः पुरुषोत्तमः ॥४७॥
वासुदेवं सितं विन्द्याद्रक्तं संकर्षणं तथा । तथा दामोदरं नीलमनिरुद्धं तथैव च ॥४८॥
श्यामं नारायणं विद्धि तथा कृष्णञ्च वैष्णवम् । ईषद्रक्तमनन्तञ्च श्रीधरं पीतवर्णकम् ॥४९॥
पत्नीहरः पिशङ्गश्च नीलो लक्ष्मीप्रदायकः । पुष्टिवृद्धिकरः श्यामः शुक्लो मोक्षकरः शुभः ॥५०॥
पीतो धनकरो ज्ञेयो रक्तो राज्यप्रदायकः । रोगदश्चाऽतिरक्तश्च कृष्णः कीर्त्तिप्रदः शुभः ॥५१॥
पापघ्नः पांसुरो नित्यं रुक्षश्चोद्वेगकारकः । स्थूलो निहन्ति चैवाऽसून् वक्रो दारिद्र्यदः सदा ॥५२॥
स्निग्धः सिद्धिप्रदः शश्वन्निष्फलः स्यादलाञ्छनः । कपिलो बहुचक्रश्च त्रिकोणो बन्धुनाशकृत् ॥५३॥
अधोमुखः क्षयकरः पुत्रघातकरः स्मृतः । आयुष्यं हरते घृष्टः करालः कुलनाशकः ॥५४॥

---

विभिन्न किसिमका वर्णहरूले युक्त भएको, नागको शरीरको चिह्न भएको र अनेकौं मुख भएको शालग्रामलाई अनन्त भनिएको छ । दायाँतिर गोलाकार चिह्न भएको, वनमालाले विभूषित शालग्राम शिलालाई कृष्णको मूर्ति भनिएको छ । यो शिलाको पूजा गर्नाले धनधान्य र सुख प्राप्त हुन्छ । जसको दुबैतिर नजिकै चारवटा रेखा छन्, माझमागमा दुईवटा चक्र देखिन्छन्, भने त्यस शिलालाई चतुर्मुखी ब्रह्माको शिला हो भनेर बुझ्नुपर्छ । तलतिर कूर्म आकार भएको चक्र छ, बीचमा खुरको आकार छ, त्यो शिव नामको शिला हो । यो अत्यन्त दुर्लभ हुन्छ, यसबाट कामनाहरू प्राप्त हुन्छन् । कमलको चिह्न भएको, भित्रतिर चार चक्रले युक्त, बाहिरपट्टि खुर तथा वनमालाले सुशोभित शिलालाई लक्ष्मीनारायणको मूर्ति भनिएको छ । जसले आफ्नो घरमा लक्ष्मीनारायण शालग्राम राखेर पूजा गर्छ, त्यसलाई दारिद्र्य, शोक, दुःख, चोर र आगाको डर हुँदैन, क्रूर ग्रहले पनि त्यस व्यक्तिलाई पीडा दिँदैनन् । यो शालग्रामको पूजा गर्ने व्यक्तिले मोक्ष पाउँछ ॥४०-४६॥

जुन शिलाको दिशा तथा विदिशा अर्थात् चारैतिर मुख देखिन्छ, त्यो भगवान् पुरुषोत्तमको मूर्ति हो । सधैं यसले भुक्ति तथा मुक्ति दिन्छ भनेर जान्नुहोस् । सेतो वर्णको शिलालाई वासुदेव, रातो रङ्गको शिलालाई सङ्कर्षण र नीलो वर्णको शिलालाई दामोदर तथा अनिरुद्ध भनिएको छ । श्यामवर्णको शालग्रामलाई नारायण, श्रीकृष्ण र विष्णुको शिला मानिएको छ । केही रातो वर्ण भएको शिलालाई अनन्त र पहेंलो वर्णको शिलालाई श्रीधरको मूर्ति भनिन्छ । कैलो र पहेंलो मिसिएको वर्णको शालग्राम पूजा गर्नाले पत्नीको नाश हुन्छ, नीलो वर्णको शालग्राम पूजा गऱ्यो भने सम्पत्ति प्राप्त हुन्छ, कालो वर्णको शालग्राम पूजा गर्दा वृद्धि र पुष्टि प्राप्त हुन्छ, सेतो शालग्रामको पूजा गर्नाले कल्याण तथा मुक्ति प्राप्त हुन्छ । पहेंलो वर्णको शालग्रामले धन दिन्छ, रातो वर्णको शालग्राम पूजा गर्नाले राज्य प्राप्त हुन्छ, अत्यन्त रातो वर्णको शालग्रामले रोग पैदा गर्छ र कालो वर्णको शालग्रामबाट कीर्ति प्राप्त हुन्छ ॥४७-५१॥

पाण्डुरवर्णको अर्थात् सेतो वा फिका पहेंलो वर्णको शालग्राम पूजा गर्दा पापनाश हुन्छ, खैरो वर्णको शालग्राम पूजा गर्दा सधैं भय र उद्वेग आइलाग्छन् । धेरै ठूलो शालग्रामले आयुलाई नाश गर्छ तथा टेढो शालग्रामले दारिद्र्य पैदा गर्छ । शालग्राम चिल्लो छ भने सधैं सिद्धि दिन्छ, कुनै चिह्न नभएको शालग्रामको पूजा गर्नाले कुनै फल पाइदैंन । धेरै चक्र भएको, कैलो वर्णको र त्रिकोण परेको शालग्रामका पूजा गर्दा दाजुभाइको नाश हुन्छ । तलतिर मुख फर्किएको शालग्राम क्षयकारी तथा पुत्रघाती हुन्छ । घोटिएको शालग्रामको पूजा गऱ्यो भने आयु नाश हुन्छ, डर पैदा हुन्छ र कुलकै नाश हुन्छ ॥५४॥

---

१५. चतस्रचक्रसंयुक्तः इति न.सं.पु.पाठः ।
१६. दुर्ग्रहैश्च न पीड्यते इति न.सं.पु.पाठः ।

करालो विकरालश्च सर्वसम्पत्प्रणाशकः। दुर्दरं स्फुटितं दग्धं त्रिकोणञ्च विवर्जयेत्[१७] ॥५५॥
अन्तःस्फुटितचक्रञ्च बहुचक्रं तथैव च। बहुरेखं बहुच्छिद्रं तिर्यग्भूतं तथा त्यजेत् ॥५६॥
शालग्रामशिला यत्र तत्र सन्निहितो हरिः। स्नानं जपं हुतं दानं वाराणस्यां विशिष्यते[१८] ॥५७॥
चक्राङ्कितस्य सान्निध्ये यत्किञ्चित् क्रियते नरैः। स्नाप्तं जप्तं हुतं दत्तं[१९] तत्सर्वञ्चाऽक्षयं भवेत् ॥५८॥
सुदर्शनाख्यमेकेन द्वाभ्यां नारायणः स्मृतः। त्रिभिश्चैवाच्युतः साक्षाच्चतुश्चक्रो जनार्दनः ॥५९॥
पञ्चभिर्वासुदेवः स्याद् षड्भिः प्रद्युम्न एव च। संकर्षणः सप्तभिः स्यादष्टभिः पुरुषोत्तमः ॥६०॥
नवव्यूहस्तु नवभिः दशभिश्चैव जन्मकृत्। रुद्रचक्राणि रुद्रस्य द्वादशो द्वादशात्मनः ॥६१॥
एतेभ्योऽधिकचक्रात्मा परमात्मा स उच्यते। तस्याऽर्चनादवाप्नोति कैवल्यं केवलं मुने ॥६२॥
ये पश्यन्ति च पाषाणान् विष्णुचक्रेण संयुतान्। ते तद्दर्शनमात्रेण मुच्यन्ते सर्वकिल्विषैः ॥६३॥
न गुरुर्न च मन्त्रोऽस्ति न जपो न च भावना। न स्तुतिर्नोपचारस्तु चक्राङ्किते शिलार्चने ॥६४॥
म्लेच्छदेशेऽशुचौ स्थाने चक्राङ्कं यत्र तिष्ठति। योजनानि भवेयुश्चाऽच्युतक्षेत्राणि सारवित् ॥६५॥
तन्मध्ये म्रियते यस्तु पूजकः सुसमाहितः। सर्वपापैर्विनिर्मुक्तो न पुनर्जायते भुवि ॥६६॥
ब्रह्महत्यादिकं पापं यत्किञ्चित्कुरुते नरः। तत्सर्वं विलयं याति शालग्रामशिलार्चनात् ॥६७॥
शालग्रामान्तिके देशे श्राद्धं यः कुरुते मुने। पितरस्तस्य तृप्यन्ति तृप्ता वर्षशतं दिवि ॥६८॥
शालग्रामसमीपे तु क्रोशमात्रं समन्ततः। कीटोऽपि च मृतो याति वैकुण्ठभुवनं ध्रुवम् ॥६९॥
शालग्रामशिलायां यो मूल्यमुद्घाटयेन्नरः। विक्रेता चाऽनुमन्ता च परीक्षां योऽनुमोदयेत् ॥७०॥
ते सर्वे पापिनो ज्ञेयाः शेषा दुःखस्य भागिनः। किं मुने बहुनोक्तेन नरकं यान्ति दारुणम् ॥७१॥

---

त्यस किसिमको शिला अत्यन्त डरलाग्दो र सम्पत्तिनाशक हुन्छ। त्यसैगरी कुरूप भएका, टुटेफुटेका, जलेका, त्रिकोण परेका, भित्र चक्र फुटेका, धेरै रेखा तथा चक्र भएका शिलाहरूलाई शालग्राम मानेर पूजा गर्नुहुँदैन। जहाँ शालग्रामको शिला रहन्छ त्यहाँ भगवान् विष्णु बस्नुभएको हुन्छ। काशीमा गरेको स्नान, जप र दानबाट पाइने फलभन्दा पनि शालग्राम शिलाको पूजाबाट बढी फल प्राप्त हुन्छ। चक्रले युक्त भएको शालग्रामको नजिकै बसेर मानिसले जुन स्नान, दान, जप, होम आदि गर्छ, ती सबै अक्षय कर्म हुन्छन्। एक चक्र भएको सुदर्शन, दुई चक्र भएको नारायण, तीन चक्र भएको अच्युत, चार चक्र भएको जनार्दन, पाँच चक्र भएको वासुदेव, छ चक्र भएको प्रद्युम्न, सात चक्र भएको सङ्कर्षण, आठ चक्र भएको पुरुषोत्तम, नौ चक्र भएको नवव्यूह (नौवय ग्रहहरूको समूह), दश चक्र भएको सृष्टिकर्ता ब्रह्मा, एघार चक्र भएको भगवान् रुद्र र बाह्र चक्र भएको शालग्राम भगवान् सूर्यको शिलामूर्ति हो ॥५५-६१॥

हे अगस्त्य मुनि ! यसभन्दा बढी चक्रसङ्ख्या भएको शालग्रामलाई परमात्मा भनिएको छ। त्यस शालग्रामको पूजा गर्नाले कैवल्य (मुक्ति) प्राप्त हुन्छ। जुन मानिसले विष्णुको चक्रले युक्त भएको शालग्राम शिलाको दर्शन गर्छन्, ती मानिसहरू दर्शन गर्नाले मात्रै पनि सम्पूर्ण पापबाट मुक्त हुन्छन्। चक्रको चिह्न भएको शालग्राम पूजा गर्नका लागि कुनै गुरु चाहिँदैन, मन्त्रको पनि आवश्यकता पर्दैन। जप, भावना, स्तुतिपाठ, पूजासामग्री आदिको पनि आवश्यकता हुँदैन। हे तत्त्ववेत्ता अगस्त्य मुनि ! म्लेच्छ देशमै भए पनि पवित्र स्थलमा चक्रले युक्त भएको शालग्राम शिला छ भने त्यसको तीन योजनसम्मको क्षेत्रलाई विष्णुक्षेत्र भनिन्छ। त्यस क्षेत्रभित्र शालग्रामको पूजा गर्ने जुन व्यक्तिको मृत्यु हुन्छ त्यसले सबै पापबाट मुक्त भएर फेरि पृथ्वीमा जन्म लिँदैन। मनुष्यले गरेको ब्रह्महत्या आदि कडा पापहरू शालग्रामको पूजा गर्नाले नाश हुन्छन्। जो मानिस शालग्राम शिलाको नजिकै रहेको पवित्र ठाउँमा श्राद्ध गर्छ, त्यसका सबै पितृहरू दिव्य सय वर्षसम्म स्वर्गलोकमा बसेर तृप्त हुन्छन्। शालग्राम शिलाको चारैतर्फ एक कोससम्म यदि कुनै कीरा पनि मऱ्यो भने त्यो अवश्य वैकुण्ठ जान्छ। जो मानिस शालग्राम शिला बेचेर त्यसको मूल्य लिन्छ, त्यो बेच्ने, बेच्नलाई सल्लाह दिने र परीक्षा गर्ने सबै मानिसहरू पापी नै हुन्छन्, तिनीहरूले ठूलो दुःख पाउँछन्। हे मुनि ! धेरै के भनूँ, तिनीहरू डरलाग्दो नरकमा गएर तिनीहरू पर्छन् ॥६२-७१॥

---

१७. दुर्दरः स्फुटितः दग्धस्त्रिकोणश्च विवर्जयेत् इति न.सं.पु.पाठः।
१८. स्नानं जपञ्च दानञ्च वाराणस्यां कृताधिकम् इति न.सं.पु.पाठः।
१९. स्नानं दानं जपं होमम् इति न.सं.पु.पाठः।

स्मरणं वासुदेवस्य कर्तव्यं पापभीरुणा। शालग्रामशिलाचक्रार्चनं हि सततं मुने ॥७२॥
पृथिव्यां यानि तीर्थानि पुण्यान्यायतनानि च। तत्फलानि ह्यवाप्नोति विष्णोर्नामानुकीर्त्तनात् ॥७३॥
तस्मादेव नदीश्रेष्ठा कृष्णाभा सा घटोद्भव। परिवारैः समं सांशैर्विष्णुना नित्यसेविता ॥७४॥
सर्वदेवमयो विष्णुः सर्वतीर्थमयी च सा। गौरीस्वेदोद्भवस्नानात्कोटितीर्थगुणं फलम् ॥७५॥
प्रयागे शतधा स्नात्वा कुरुक्षेत्रे च नैमिषे। कृष्णाभायां सकृत् स्नात्वा फलं तुल्यं भवेदिह[२०] ॥७६॥
श्राद्धं करोति यस्तस्यां पितॄन्सर्वान् समुद्धरेत्। दत्ताच्छतगुणं लब्ध्वा गयायां स्वर्व्रजन्ति ते[२०क] ॥७७॥
तस्याञ्च स्नानमात्रेण सर्वपापैर्विवर्जितः। कैवल्यं लभते[२१] ज्ञानाज्जपहोमार्चनान्मुने ॥७८॥
एकादश्यां वरे शुक्ले माघे मासि विशेषतः। भक्त्या करोति यः स्नानं कोटिकोटिगुणं फलम् ॥७९॥
पशुपक्षिमृगा मर्त्या वृक्षा ग्रावास्तृणानि च। तज्जलस्पर्शनादेव गच्छन्ति स्वर्गमुत्तमम् ॥८०॥
तस्यां दत्तं हुतं जप्तं तत्सर्वमक्षयं भवेत्। देहान्ते च परं स्थानं लभन्ते पुण्य[२२]कारकाः ॥८१॥

---

हे अगस्त्य मुनि ! पापदेखि डराउने मानिसले शालग्रामस्वरूप भगवान् वासुदेवको सम्झना गर्नुपर्छ र चक्रले युक्त भएका ती शिलाहरूको सधैँ पूजा गर्नुपर्छ। यस भुवनमा जति पनि तीर्थ छन्, जति मन्दिरहरू छन् र जति पनि पूजायोग्य पवित्र स्थानहरू छन्, ती सबैको सेवा गर्नाले जुन फल प्राप्त हुन्छ, त्यो फल केवल शालग्रमस्वरूप भगवान् विष्णुको नामकीर्तनले उपलब्ध हुन्छ ॥७२-७३॥

हे अगस्त्य मुनि ! त्यस्ता विष्णुलाई आफ्नो गर्भमा धारण गर्ने भएकी हुनाले नै गण्डकी सबै नदीहरूमा श्रेष्ठ मानिएकी छिन् ॥ त्यहाँ भगवान् विष्णु अंशावतार लिएर आफ्नो परिवारसहित बस्नुभएको छ। विष्णु भगवान् सबै देवताका स्वरूप हुनुहुन्छ भने गण्डकी नदी सबै तीर्थस्वरूप छिन्। गण्डकी श्रीजगदम्बा गौरीको पसिनाबाट पैदा भएकी हुन्। त्यसैले गण्डकी नदीमा स्नान गर्नाले अरू तीर्थको भन्दा करोडौँ गुणा बढी फल प्राप्त हुन्छ ॥७४-७५॥

तीर्थराज प्रयाग कुरुक्षेत्र र नैमिषारण्यमा सय पटक स्नान गर्नाले मानिसले जुन फल प्राप्त गर्दछ त्यो फल कालीगण्डकीमा एक पटक स्नान गर्नाले पाउँछ। जसले कृष्णा गण्डकीको तटमा बसेर श्राद्ध गर्छ, त्यसले आफ्ना सबै पितृहरूको उद्धार गर्छ। गयातीर्थमा पिण्डदान गर्दा उसले जति फल पाउँछ, कृष्णागण्डकीमा एक पटक स्नान गर्दा त्यो भन्दा सय गुणा बढी फल पाएर सम्पूर्ण पाप नाश भई ऊ स्वर्ग जान्छ। त्यसमा पनि जानेर स्नान, जप, होम, पूजा आदि गर्दा उसले कैवल्य अर्थात् मोक्ष प्राप्त गर्छ ॥७६-७८॥

एकादशीका दिन, आइतबार, शुक्ल पक्ष र विशेष गरेर माघ महिनामा जुन मानिसले भक्तिपूर्वक कालीगण्डकीमा स्नान गर्छ, त्यसले अन्य तीर्थको भन्दा करोडौँ गुणा बढी पुण्य फल प्राप्त गर्छ। त्यस नदीको जल स्पर्श गर्नाले मात्रै पनि पशुपक्षी, मनुष्य आदि सबै चर-अचर प्राणीहरू सर्वोत्तम गतिमा पुग्छन्। त्यस नदीको तीरमा गरिएको स्नान, जप, होम, तपस्या आदि सबै अक्षय हुन्छन्। यसरी गण्डकी नदीमा शुभकर्म गर्नेहरूले मरेपछि परमपद प्राप्त गर्छन् ॥७९-८१॥

---

२०. लभेन्नरः इति न.सं.पु.पाठः।
२०क. दत्त शतगुणं लब्ध्वा गयायां यान्ति नाककम्, इति न.सं.पु.पाठः।
२१. प्राप्यते इति न.सं.पु.पाठः।
२२. तच्च इति न.सं.पु.पाठः।

मुक्तिधारा च कृष्णाभा तयोश्च सङ्गमे जलम्। सर्वतीर्थोत्तमं विद्धि देवलोकैश्च वाञ्छितम्॥८२॥
तस्मिन् तीर्थे नरः स्नातः प्राप्नोति परमं पदम्। मोहकञ्चुकमुत्सृज्य ज्ञानकञ्चुकसंवृतः॥८३॥
होमं दानं जपं पूजां[२३] स्नातको यः करोति वै। कोटिकोटिगुणं लब्ध्वा फलं प्राप्नोत्यगोचरम्॥८४॥
कृष्णप्रभायाः कथितं महत्त्वमेतद्धि[२४] वत्साऽर्य नदीवरायाः।
तदादि वासं त्रिदशाश्च[२५] चक्रुः स्वैः स्वैर्मुदांशैः गिरिशप्रसादात्॥८५॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे कृष्णाभामाहात्म्यं नाम पञ्चपञ्चाशत्तमोऽध्यायः॥५५॥

---

मुक्तिधारा र कृष्णा नदीको सङ्गमस्थल कागवेनीमा वहने जलले युक्त भएको स्थानलाई सर्वोत्तम तीर्थ मानिएको छ। यो तीर्थप्रति देवताहरूको पनि ठूलो लालसा रहेको हुन्छ। त्यस तीर्थमा स्नान गर्ने मानिसले मोहरूपी भोटोलाई फुकाली ज्ञानरूपी भोटो पहिरिएर परमपद प्राप्त गर्छ॥८२-८३॥

कालीगण्डकीनदीमा स्नान गरेर जुन व्यक्तिले जप, पूजा, हवन आदि गर्छ, त्यसले करोडौं करोड गुणा बढी अदृष्ट फल पाउँछ। हे अगस्त्य मुनि! जुन नदीमा आजसम्म भगवान् शङ्करको अनुग्रहबाट सबै देवताहरू आ-आफ्नो अंश लिएर आनन्दसित बसेका छन् त्यस्ती नदीश्रेष्ठ कालीगण्डकीको महत्त्व मैले तपाईंलाई बताएँ॥८४-८५॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डको कालीगण्डकीमाहात्म्यनामक पचपन्नौं अध्याय पूर्ण भयो।

---

२३. जपार्चनं हुतं दत्तम् इति न.सं.पु.पाठः।
२४. माहात्यम् इति न.सं.पु.पाठः।
२५. अद्यादि वासानि सुराश्च इति न.सं.पु.पाठः।

# षट्पञ्चाशत्तमोऽध्यायः

## कालीगण्डकीमाहात्म्यप्रसङ्गे मुक्तितीर्थस्याविर्भावकथा

अगस्त्य उवाच

चित्रञ्च जायते स्वान्ते मम देवाऽधुना प्रभो। आकर्ण्यते मुखाम्भोजान्मुक्तितीर्थमिति प्रभो ॥१॥
समुत्पन्नं कथं तीर्थं[१] मुक्तिधारा कथं भवेत्। एतच्च श्रोतुमिच्छामि वद मे सर्वविद्विभो ॥२॥

स्कन्द उवाच

मुक्तिभूभृन्मध्यभागे धात्रा तप्तं पुरा मुने। समावाह्य जले वह्निं हुतवाँस्तत्र हव्यकम् ॥३॥
तयोर्वैरोऽपि चाऽभ्यन्तः कृशानुजलयोर्मिथः। तथापि चैकदेहन्ते तत्राऽऽश्रित्य प्रतिष्ठिते[२] ॥४॥
देवास्तत्र समागत्य गृह्णन्ति स्म मुदाऽन्विताः। पञ्चामृताक्तञ्च हविः[३] प्रज्ज्वलद्वह्निविग्रहम् ॥५॥
ब्रह्मादयः सुरास्तत्र तिष्ठन्ति स्म निरन्तरम्। हविर्भुजो हविर्भुजञ्जलाग्निमूर्त्तयः सदा ॥६॥
विष्णोर्मूर्त्तिं जलं विद्याद् रुद्रद्मूर्त्तिं तथानलम्। तयोश्च हुतवान् ब्रह्मा चाऽऽवाह्य हविषा च तौ ॥७॥
दिक्पतयश्च भोक्तारः पुरुहूतमुखा मुने। यत्र देवमये नित्यं तत्र तद् ब्रह्मशासनात् ॥८॥
प्राणाग्नौ[४] विषयं हव्यं मनःकुण्डे जुहोति वै। श्वासश्रुवेण च ब्रह्मा ध्यात्वा तत्र पुरा परम् ॥९॥
मुक्तिहेतोः कृतो यज्ञो[५] ब्रह्मणासुभृतां परम्। मुक्तिक्षेत्रमिति ख्यातं तस्माल्लोके[६] घटोद्भव ॥१०॥
प्रत्यक्षं यत्र रुद्रोऽसौ चाऽग्निमूर्त्तिस्तथापरः। विष्णुश्चाऽमृतमूर्त्तिश्च होताऽजस्तत्र किं पुनः ॥११॥

---

## अध्याय -५६

## कालीगण्डकीको माहात्म्यनिरूपणको प्रसङ्गमा मुक्तितीर्थको आविर्भाव भएको कथा

अगस्त्य मुनिले भन्नुभयो – हे कार्तिक स्वामी ! तपाईंको मुखारविन्दबाट निस्किएको मुक्तितीर्थको माहात्म्य सुनेर मलाई अत्यन्त आश्चर्य पैदा भएको छ। त्यो तीर्थ कसरी पैदा भयो ? मुक्तिधारा कसरी नाम रह्यो ? म यो कुरा सुन्न चाहन्छु। हे सर्वज्ञ प्रभु ! मलाई बताइदिनुहोस् ॥१-२॥

कार्तिक स्वामीले भन्नुभयो – हे मुनि ! अघि मुक्ति नाम गरेको पर्वतको बीचमा ब्रह्माले तपस्या गर्नुभएको थियो, त्यहाँ उहाँले अग्निको आवाहन गरेर हवन गर्नुभएको थियो। यद्यपि अग्नि र पानीको परस्पर भित्रभित्रै वैरभाव छ तैपनि त्यहाँ तिनीहरू एउटै शरीर भएर बसेका छन्। देवताहरू त्यहाँ आएर अत्यन्त प्रसन्न हुँदै पञ्चामृतले युक्त भएको हविलाई बलेको ज्वालाका रूपमा ग्रहण गर्छन्। ब्रह्मा आदि गरेका देवताहरू सधैँ त्यहाँ बस्छन्। हविलाई ग्रहण गर्ने अग्नि पनि जल र अग्निको मूर्ति लिएर त्यहाँ निरन्तर विराजमान छन्। विष्णुको मूर्ति जल हो, शिवको मूर्ति अग्नि हो भनेर बुझ्नुहोस्। हवनमा संलग्न भएका ब्रह्माले ती दुबै अग्नि र जलरूप शिव एवं विष्णुको आवाहन गरेर ती दुबैमा हवन गरे अर्थात् पानीभित्र रहेको ज्योतिस्वरूपमा हवन गरे ॥३-७॥

हे मुनि ! हवि ग्रहण गर्ने इन्द्र आदि दिक्पालहरूले पनि देवस्वरूप भएको त्यस ठाउँमा ब्रह्माको निर्देशन अनुसार आएर उत्तम अग्निकुण्डमा हवन गरे। अघि ब्रह्माजीले परम पुरुषको ध्यान गरी श्वासलाई सुरो बनाई मनरूपी कुण्डमा विराजमान प्राणरूपी अग्निमा विषयरूपी चरुको आहुति दिनुभयो र समस्त प्राणधारी जीवहरूको मुक्तिका लागि यज्ञ परिपूर्ण गर्नुभयो। हे अगस्त्य मुनि ! त्यसै समयदेखि लोकमा यस क्षेत्रको नाम मुक्तिक्षेत्र भन्ने प्रसिद्ध भयो। त्यस क्षेत्रमा भगवान् शिवजी अग्निरूप लिएर, भगवान् विष्णु जलको रूप लिएर अनि ब्रह्माजी हवनकर्ता बनेर त्यहाँ सधैँ रहनुहुन्छ भने यसको महत्त्वका बारेमा अरू कति नै बताउन सकिन्छ र ? ॥८-११॥

---

१. कथं समुद्भवं तीर्थम् इति न.सं.पु.पाठः।
२. प्रतिष्ठितः इति न.सं.पु.पाठः।
३. पञ्चामृताक्तान् हविषः इति न.सं.पु.पाठः।
४. परागौ इति न.सं.पु.पाठः।
५. कृतं यज्ञम् इति न.सं.पु.पाठः।
६. मुक्तिक्षेत्र इतिख्यातस्तस्माल्लोकैः इति न.सं.पु.पाठः।

ऋषयो यन्न[७] मुञ्चन्ति न देवाः किन्नरास्तथा। गन्धर्वाप्सरसः सिद्धा[८] नित्यं तत्र किमुच्यते ॥१२॥
लोकाश्चतुर्विधोद्भूताः स्नात्वा तत्र कलेवरम्। त्यक्त्वा मुक्तिं प्राप्नुवन्ति मुक्तिक्षेत्रं ततः स्मृतम्[९] ॥१३॥
तत्राप्लवन्ते ये भक्त्या मोक्षं प्रापन्ति तत्क्षणात्[९क]। सर्वजन्मार्जितैः पापैस्ते मुक्ता नात्र संशयः ॥१४॥
ज्येष्ठस्य शुक्लपक्षस्य दशम्यां स्नाति तत्र यः। कोटिजन्मार्जितैः पापैः स मुक्तो नात्र संशयः ॥१५॥
अथवा मकराख्यायां च सङ्क्रान्तौ स्नाति तत्र यः। सर्वपापैर्विनिर्मुक्तः प्राप्नोति परमं पदम् ॥१६॥
जप्तं दत्तं हुतं तत्र रुद्रमुद्दिश्य यैर्नरैः। सन्त्यज्य पुनरावृत्तिं सम्मते चैश्वरी गतिः[१०] ॥१७॥
स्त्रियोऽपि यं यमिच्छन्ति प्राप्नुवन्ति तमाशु च। सर्वपापैर्विनिर्मुक्तास्तत्र स्नानान्न संशयः ॥१८॥
भोजयन्ति द्विजांस्तत्र भोज्यैश्चतुर्विधैः समम्। स्वर्गे तिष्ठन्ति वंश्यैस्ते[११] सुतृप्ताः पापवर्जिताः ॥१९॥
श्राद्धं करोति यस्तत्र तर्पणैर्भक्तिभिर्मुदा। स्वर्गे तत्पितरो यान्ति[१२] चाऽधस्थाश्च हतैनसः ॥२०॥

---

जुन ठाउँलाई ऋषिहरू, देवता, गन्धर्व, किन्नर, अप्सरा र सिद्धहरूले कहिल्यै छाड्दैनन् भने त्यस्तो ठाउँको महत्त्व वयान गर्न सकिँदैन। चारैथरी प्राणीहरूले त्यहाँ स्नान गरेर शरीरलाई छाडे भने मुक्ति पाउँछन्। त्यसैले त्यस क्षेत्रको नाम मुक्तिक्षेत्र रहेको हो। ज–जसले त्यस ठाउँमा भक्तिपूर्वक स्नान गर्छन्, तिनीहरूले तुरुन्तै मुक्ति पाउँछन् र सम्पूर्ण जन्ममा गरेका पापहरूबाट मुक्त हुन्छन्, यसमा शङ्का छैन। जसले ज्येष्ठ महिनाको शुक्लपक्षको दशमीका दिन त्यस क्षेत्रमा गएर स्नान गर्छ, त्यो व्यक्ति करोडौँ जन्मदेखि गर्दै आएको पापबाट मुक्त हुन्छ, यसमा सन्देह छैन। अथवा मकर सङ्क्रान्तिको दिन जुन मानिसले त्यस क्षेत्रमा गएर स्नान गर्छ, त्यस व्यक्तिले समपूर्ण पापबाट मुक्त भएर परमपद पाउँछ ॥१२–१६॥

ज–जसले त्यस क्षेत्रमा सबेर शिवजीको ध्यान गर्दै मन्त्रजप गर्छन्, दान गर्छन् र हवन गर्छन् भने तिनीहरूले जन्मनु र मर्नुपर्ने आवृत्तिको स्थितिलाई त्याग गरेर ईश्वरीय गति पाउँछन् अर्थात् ईश्वरमा गएर मिल्छन्। स्त्री जातिहरूले पनि त्यस क्षेत्रमा गएर स्नान गरे भने सम्पूर्ण पापबाट मुक्त भएर आफूले चाहेको कुरा तुरुन्त पाउँछन् अर्थात् उनीहरूको मनको कामना तत्कालै पूर्ण हुन्छ। त्यस मुक्तिक्षेत्रमा ब्राह्मणलाई ज–जसले लेह्य, चोष्य आदि चार किसिमका भोजनहरू गराउँछन्, तिनीहरू सम्पूर्ण पापदेखि मुक्त र आत्मतृप्त भएर आफ्ना वंशका साथ स्वर्गमा बस्न पाउँछन्। त्यहाँ जुन मानिसले भक्तिपूर्वक तर्पण दिएर पितृहरूको श्राद्ध गर्छ, त्यस व्यक्तिका पितृहरू नरकमा बसेको भएता पनि पापबाट मुक्त भएर तृप्त हुँदै स्वर्गमा जान्छन् ॥१७–२०॥

---

७. यत्रऋषयो यत्र मुञ्चन्ति, इति न.सं.पु.पाठः।
८. गन्धर्वाश्चाप्सरः, इति न.सं.पु.पाठः।
९. त्यज्य मुक्तिं प्राप्नुवन्ति मुक्तिक्षेत्रः ततः स्मृतः, इति न.सं.पु.पाठः।
९क. प्राप्यन्ति तत्क्षणात, इति न.सं.पु.पाठः।
१०. लभ्यते चैश्वरीर्गतिः, इति न.सं.पु.पाठः।
११. स्वर्गे तिष्ठति वंशैः स, इति न.सं.पु.पाठः।
१२. स्वर्गे तृप्ताश्च तिष्ठन्ति, इति न.सं.पु.पाठः।

यावत्यः सरितः सन्ति गिरिगह्वरजा इह [१३] । मिलिता यत्र कृष्णायां तत्र [१४] तीर्थानि सङ्गमे ॥२१॥
सङ्गमेषु च तीर्थेषु क्षुद्रापगाप्रयुक्तिषु । प्रयान्ति ते दिवं स्नात्वा वियुक्ताः सर्वकिल्विषैः ॥२२॥
ब्रह्मकुण्डे नरः स्नात्वा ब्रह्मलोकं प्रगच्छति । रुद्रकुण्डे तथा स्नात्वा रुद्रलोकं स गच्छति ॥२३॥
अनन्ताख्ये ह्रदे स्नात्वा दिवं यान्ति नरोत्तमाः । पातकैः पञ्चभिर्मुक्ताश्चक्रनेमिगिरेरधः ॥२४॥

यावत्योऽद्रिदरीभवाः सुललिता नद्यो हिमाद्रेरधः-
शैलानाञ्च समन्ततो घटज ताः पूतप्रवाहाः सदा ।
सप्तानाञ्च तटेषु सङ्गमशुभैः श्रीगण्डकीनां जलै-
रन्यासां सलिलैः समं शिवकरैस्तीर्थानि पुण्यानि वै ॥२५॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे कृष्णप्रभामाहात्म्ये मुक्तिक्षेत्रोत्पत्तिर्नाम षट्पञ्चाशत्तमोऽध्यायः ॥५६॥

---

हिमालयका विभिन्न पर्वतबाट पैदा भएका जति पनि नदीहरू छन् । तिनीहरू गएर कालीगण्डकीमा मिसिएपछि त्यस सङ्गमस्थलको जल तीर्थ हुन्छ। कालीगण्डकी नदीसित मिलेका साना नदी अर्थात् खोलाहरूको तीर्थमय सङ्गमस्थलमा स्नान गर्नाले प्राणीहरू सम्पूर्ण पापबाट मुक्त भएर स्वर्ग जान्छन् । जसले ब्रह्मकुण्डमा स्नान गर्छ, त्यो ब्रह्मलोक जान्छ। त्यस्तै रुद्रकुण्डमा स्नान गर्ने व्यक्ति रुद्रलोक पुग्छ। जुन मानिसहरूले चक्रनेमि पहाडको तलतिर रहेको अनन्त नाम गरेको तलाउमा स्नान गर्छन्, ती मानिसहरू पाँच किसिमका महापापबाट मुक्त भएर स्वर्ग जान्छन् ॥२१-२४॥

हिमालयको गुफाबाट निस्किएका कञ्चन जल भएका जति पनि सुन्दर नदीहरू छन्, पर्वतका चारैतर्फ फैलिएका ती नदीहरूको प्रवाह पवित्र छ। सप्तगण्डकीलाई पूर्णता दिन तटमा मिल्न आउने कल्याणदायक अरू नदीहरू पनि पवित्र हुन्छन् । ती सबै पुण्यदायक तीर्थ हुन् ॥२५॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डको कृष्णप्रभामाहात्म्यमा मुक्तिक्षेत्रोत्पत्तिनामक छपन्नौं अध्याय पूर्ण भयो ।

---

१३. यावतीभिर्नदीभिश्च गिरिगह्वरजन्मभिः ।
कृष्णभायां जले मिश्रं तानि तीर्थानि सङ्गमे ॥ इति न.सं.पु.पाठः ।
१४. क्षुद्रापगादिभिः युक्तिषु, इति न.सं.पु.पाठः ।

# सप्तपञ्चाशत्तमोऽध्यायः

## बदरिकाश्रममाहात्म्यम्

### स्कन्द उवाच

अत ऊर्ध्वं प्रवक्ष्यामि बदरिकाश्रमस्य च। माहात्म्यञ्च पुरा गौर्या घर्मो यत्राऽपतद् गिरौ ॥१॥
वञ्चितो यत्र विष्णुश्च हिमाद्रिसुतया पुरा। नारदवचनेनाऽऽर्य स विष्णुः प्राप्तवान् त्रपाम् ॥२॥
तत्प्रमार्ष्टुं तपस्तत्र विष्णुश्चकार शेखरे। ऋषिणा नरनाम्ना वै सह कठिनमद्भुतम् ॥३॥
दिव्यवर्षसहस्राणि तपस्तप्तञ्च विष्णुना। बदरिकाश्रमं शैलमद्यापि स न मुञ्चति ॥४॥
तामेव च समाराध्य विष्णुना प्राप्तमुत्तमम्। सम्पूज्य विधिवल्लिङ्गं तामेव प्रजजाप सः ॥५॥
सिद्धेश्वरमहालिङ्गं सर्वसिद्धिफलप्रदम्। यस्मात्सिद्धरसोद्भूतं तदेव पूजयन् सदा[1] ॥६॥
सृष्टिं स्रष्टुं शिवं पूर्वं ब्रह्माराधितवान् पुरा। समुद्भूतं ततो लिङ्गं[2] ब्रह्मणः सिद्धिदायकम् ॥७॥
घर्मबिन्दुः शिवानेत्राद्यत्राऽपतच्च शेखरे। स्नात्वा तत्रैव विष्णुश्च बदरीवृक्षमाप्तवान् ॥८॥
तस्मादपि च घर्मो हि चाऽद्यापि प्रतिनिःसृतः। आपाददेहतोऽजस्रमुदकुण्डमिति श्रुतम्[3] ॥९॥
अद्यापि देवताः सर्वे यक्षगन्धर्वकिन्नराः। विचरन्ति मुदा नित्यं मुने बदरिकाश्रमे ॥१०॥
ऋषयस्तत्र चक्रुर्वै तपांसि च सुभक्तिभिः। सप्तमुन्यादयो विप्राः श्रद्धया मोक्षमीप्सवः ॥११॥
ब्रह्मात्मजो मुदा युक्तो गान्धर्ववित् स नारदः। असेवत सदा विष्णुं[4] गायन् वीणां प्रवादयन् ॥१२॥

---

## अध्याय – ५७

### बदरिका आश्रमको माहात्म्य

यसपछि म जहाँ अघि जुन पर्वतमा पार्वतीको पसिनाको थोपा खसेको थियो त्यस बदरिकाश्रमको माहात्म्य बताउँछु। हे अगस्त्य मुनि ! नारदको वचनले गर्दा हिमालयकी छोरी पार्वतीद्वारा ठगिएका विष्णुले अत्यन्त लज्जित भएर लज्जाबोध एवं कुण्ठा हटाउनका लागि यस शिखरमा नर नाम गरेका ऋषिका साथ तपस्या गर्नुभएको थियो। विष्णुले दिव्य एक हजार वर्षसम्म तपस्या गर्नुभयो। आजसम्म पनि उहाँले त्यो बदरिकाश्रम पर्वतलाई छोड्नुभएको छैन। तिनै भगवतीको आराधना गरेर विष्णुले उत्तम शिवलिङ्ग प्राप्त गर्नुभयो र त्यस लिङ्गलाई विधिवत् पूजा गरेर देवीमन्त्र जप्नुभयो। सिद्धरसबाट उत्पन्न भएको हुनाले सम्पूर्ण सिद्धि दिने सिद्धेश्वर महालिङ्गको उहाँले बारम्बार पूजा गर्नुभयो ॥१-६॥

अघि संसारको सृष्टि गर्नका लागि ब्रह्माजीले शिवजीको आराधना गर्नुभएको थियो। त्यसै समयदेखि ब्रह्मालाई सिद्धि दिने यस लिङ्गको प्रादुर्भाव भएको हो। जुन शिखरमा पार्वतीको आँखाबाट पसिनाको थोपा झर्‍यो त्यसै स्थानमा स्नान गरेर विष्णुले बयरको रुखमुनि बसेर तपस्या गर्नुभयो। उहाँको पाउदेखि शिरसम्मका अङ्गहरूबाट पसिना निस्किए। जहाँ त्यो पसिना जम्यो त्यसलाई आजसम्म पनि उदकुण्ड भनिँदै छ। हे अगस्त्य मुनि ! आज पनि त्यस बदरिकाश्रममा देवता, यक्ष, गन्धर्व र किन्नरहरू आनन्दसित सधैं विचरण गर्दछन्। विभिन्न मुनिहरू र सप्तर्षि आदि गरिएका मोक्षको कामना गर्ने ब्रह्मर्षिहरूले श्रद्धाका साथ त्यहाँ भक्तिपूर्वक तपस्या गरे। गन्धर्व विद्याका ज्ञाता, ब्रह्माजीका छोरा नारदले पनि निरन्तर वीणा बजाएर त्यसै स्थानमा विष्णुको सेवा गरेका थिए ॥७-१२॥

---

१. तमेव पूजितोऽनिशम् इति न.सं.पु.पाठः।
२. समुद्भूतस्ततो लिङ्गः इति न.सं.पु.पाठः।
३. श्रुतः इति न.सं.पु.पाठः।
४. असेवत्तत्र विष्णुं वै इति न.सं.पु.पाठः।

अगस्त्य उवाच

सर्वज्ञात्मजसेनानीः सर्ववार्त्ताविशारद। कोऽसौ नर इति प्रोक्तोऽधुना वदतु मां विभो[५] ॥१३॥
कथं तेन सखा लब्धो देवो विष्णुः सनातनः। नरेण च कथं तप्तं तपः श्रीहरिणा सह[५क] ॥१४॥

स्कन्द उवाच

पुण्येन लभ्यते वाञ्छा सर्वेषामात्मनः स्पृहा। पुण्यैश्च लभ्यते देहो नरत्वं कीटकैरपि[६] ॥१५॥
मानुषैरपि देवत्वञ्चाऽन्त्यजैर्विप्रता तथा। ज्ञानान्वितैर्द्विजैर्मुक्तिर्लभ्यते च[७] सुखं सदा ॥१६॥
तस्य पुण्यं प्रवक्ष्यामि शृणु घटोद्भवाऽधुना। यस्माल्लब्धं सखित्वं तद् विष्णो[८]र्नरेण सन्ततम् ॥१७॥
हिमवद्दक्षिणे भागे[९] नेपाल इति विश्रुतः। तत्र पाशुपतं[१०] क्षेत्रमासीत्कामप्रदं मुने ॥१८॥
श्लेष्मान्तके वने रम्ये वाग्वत्या दक्षिणे तटे। तत्राऽऽसील्लुब्धको म्लेच्छो नाम्ना शङ्कुः सुनिर्दयः ॥१९॥
जन्तून्निहत्य नित्यं स बुभुजे सर्वतो दिशम्[११]। शिशौ प्रौढे तथा वृद्धे समदृष्टिश्च जन्तुषु ॥२०॥
निर्दयं हतवान्नित्यं जन्तून् त्रिविधदेहिनः। एवमाजन्मपर्यन्तं वृत्तिं शङ्कुर्दधार सः ॥२१॥
एकदा तु वनं शङ्कुर्मृगयां प्रगतो मुने। मृगमेकं ददर्शाऽऽशु मृगस्थल्यां तपोवने ॥२२॥
हन्तुमियेष तं शङ्कुर्मृगं तृणचरं मुदा। सशरं चापमुद्धृत्य चाऽभिद्रुत्य प्रलक्षितः ॥२३॥
सोऽपि प्रेक्ष्य धृतं बाणं दुद्राव दूरतो भृशम्। नारायणमहातीर्थे विले विवेश सत्वरम् ॥२४॥

---

अगस्त्य मुनिले भन्नुभयो – सम्पूर्ण विषयका ज्ञाता शिवजीका सुपुत्र हे कार्तिक स्वामी ! भर्खरै नर भनेर हजुरले भन्नुभयो, यो नर भनेको को हो ? कसरी तिनले भगवान् विष्णुलाई साथी बनाए ? र विष्णुसँगै बसेर कसरी कठोर तपस्या गरे ? ॥१३-१४॥

कार्तिक स्वामीले भन्नुभयो – पुण्यले नै आफूले गरेको कामना सिद्ध हुन्छ, पुण्यले नै सबैले आत्मैदेखि गरिएको तीव्र मनोरथ पूर्ण हुन्छ र पुण्यले नै कीराहरूले मानिसको जुनी पाउँछन्। पुण्यले नै मानिस देवता बन्छ, शूद्र ब्राह्मण बन्न सक्छ र ज्ञान प्राप्त गरेका ब्राह्मणहरूसँगै सुख एवं मुक्ति प्राप्त गर्न सक्छ। हे मुनि ! म अहिले तपाईंलाई ती नरको पुण्याका बारेमा बताउँनेछु जसका कारण उनले भिगवान् नारायणलाई सखका रूपमा प्राप्त गरेका थिए ॥१५-१६॥

हे अगस्त्य मुनि ! हिमालयको दक्षिणतिर शिखरमा नेपाल नाम गरेको सबै कामना पूर्ण गरिदिने पाशुपत महाक्षेत्र छ। त्यहाँ वाग्वती नदीको दक्षिण किनारको सुन्दर श्लेष्मान्तक वनमा शङ्कु नाम गरेको दयहीन म्लेच्छ व्याधा बस्थ्यो। बालक, जवान र बूढामा भेददृष्टि नराखीकन त्यस व्याधाले सम्पूर्ण जन्तुहरूलाई मारेर खाने गर्थ्यो। त्यसले तीनैथरी प्राणीहरूमा दया नराखीकन दिनदिनै तिनको हत्या गर्थ्यो। त्यस शङ्कुले जन्मदेखि नै पशुपक्षी मारेर जीविका चलाउने वृत्ति धारण गरेको थियो ॥१५-२१॥

हे अगस्त्य मुनि ! एकदिन त्यो शङ्कु शिकार खेल्न जङ्गलतिर गयो। मृगस्थलीको तपोवनमा एउटा मृगलाई उसले देख्यो। घाँस चर्न लागेको त्यस मृगलाई देखी प्रसन्न भएर त्यस शङ्कुले मार्न खोज्यो र बाण चढाएको धनुष उठाएर लखेट्यो। त्यो मृग पनि यढैबाट बाण ताकेर आएको व्याधालाई देखेर खूबसित दौडियो र नारायण महातीर्थको ओडारमा हडबडाएर छिर्‍यो ॥२२-२४॥

---

५. भवता मेऽधुना विभो, इति न.सं.पु.पाठः।
५क. कथं तेन सखायञ्च लब्धं विष्णुं सनातनम्।
तपस्तप्तं कठोरं वै प्रभुणा सह सन्ततम् ॥ इति न.सं.पु.पाठः।
६. देहाः कीटैरपि च मानुषाः इति न.सं.पु.पाठः।
७. प्रलभ्यते इति न.सं.पु.पाठः।
८. तं विष्णुम् इति न.सं.पु.पाठः।
९. सानौ इति न.सं.पु.पाठः।
१०. पाशुपतं महाक्षेत्रम् इति न.सं.पु.पाठः।
११. अभुभुजच्च सर्वशः इति न.सं.पु.पाठः।

पशुपतेश्च वाग्वत्याः पूर्वोत्तरतटे विले। शङ्कुश्च तमनुद्रुत्य प्राप्तवान् तत्र तत्क्षणम् ॥२५॥
दृष्टवाँश्च तदा शङ्कुर्मृगस्याऽत्र गतागतम्। क्षुधया विह्वलाङ्गोऽसौ किं करोमीत्यचिन्तयत् ॥२६॥
रौद्रश्रमप्रदग्धाङ्गो विमुच्य कार्मुकं शरम्। सस्नौ नारायणे तीर्थे वाग्वत्याः सङ्गमे शुभे ॥२७॥
द्वादश्याञ्चैव कार्त्तिक्यां शुक्लायां बुधवासरे। मैत्रेण संयुतायां स शङ्कुः सस्नौ च तद्दिने ॥२८॥
स्नात्वा तत्र गृहं शङ्कुः स्वकीयं गतवान् मुने। क्वचित्कालान्तरे भूयः पञ्चत्वं प्राप्तवान् हि सः ॥२९॥
ततो देहान्तरे शङ्कुर्ब्राह्मणस्य कुले शुभे। समुद्भूतो महाप्राज्ञो[१२] वेदशास्त्रविशारदः ॥३०॥
अज्ञानतोऽपि स स्नानादभूद्धि श्रोत्रियो द्विजः। पूर्वस्नानविपाकेन वाग्वत्यां स्नातुमागतः ॥३१॥
मृगोदके महातीर्थे तत्र सस्नौ पुनर्नरः। सन्तर्प्य पितृन्देवाँश्च भक्तिपूर्वं घटोद्भव ॥३२॥
आविर्बभूव तत्रैव सम्प्रेक्ष्य स्नातकं हरिः। व्याचष्ट वचनं तस्मै वरं दातुं प्रहर्षवान् ॥३३॥

विष्णुरुवाच

धन्योऽसि कृतकृत्योऽसि भक्त पापैर्विमोचितः। पूर्वजन्मकृतैः स्नानैर्भूयश्चाऽत्र जलाप्लुतः ॥३४॥
मत्तीर्थेऽत्र कृतात् स्नानान्मम देहो न संशयः। भवानपि भवेदद्य निर्मुक्तः पापकञ्चुकैः ॥३५॥
यो वा को वा कृतस्नानो मत्तीर्थेऽत्र भवेद्धि सः। अन्त्यजो वाऽपि विप्रो वा द्वितीयं मत्कलेवरम्[१३] ॥३६॥

पछि-पछि दौडदै गएको शङ्कुले पशुपति र वाग्मती नदीको ईशानकोणमा पर्ने त्यस ओडारमा मृगलाई फेला पार्‍यो र उसले मृगलाई भित्र र बाहिर आउँदै जाँदै गरेको देख्यो। भोकले आत्तिएको शङ्कु अब के गरौं भनेर विचार गर्न थाल्यो। कडा परिश्रमले गर्दा शरीर तातेको हुनाले धनुष र बाणलाई त्यसै ठाउँमा राखेर कल्याणदायक वाग्वतीको सङ्गमस्थल नारायणतीर्थमा स्नान गर्‍यो। जुन दिन त्यस शङ्कुले त्यहाँ स्नान गर्‍यो, त्यो दिन बुधबार र अनुराधा नक्षत्रले युक्त भएको कार्तिक शुक्ल द्वादशी थियो ॥२५-२८॥

हे अगस्त्य मुनि ! त्यहाँ स्नान गरिसकेपछि त्यो शङ्कु नामक व्याधा आफ्नो घरमा गयो। केही समयपछि त्यो व्याधा मर्‍यो। त्यसपछि अर्को शरीर लिएर बुद्धिमान् त्यो व्याधा वेदशास्त्रको ज्ञाता भएर ब्राह्मणको उत्तम कुलमा पैदा भयो। नबुझी, नजानीकन स्नान गर्दा पनि त्यो व्याधा एउटा वैदिक ब्राह्मण बन्न पुग्यो। पहिलो जन्ममा स्नान गरेको कर्मको फलले गर्दा फेरि त्यो वाग्वतीमा स्नान गर्न आयो। हे अगस्त्य मुनि ! त्यस मृगोदक नाम गरेको महातीर्थमा उसले भक्तिपूर्वक स्नान गर्‍यो र सबै देवता तथा पितृहरूलाई तर्पण दिएर तृप्त गरायो। त्यसरी स्नान गर्न लागेको त्यस व्यक्तिलाई देखेर भगवान् विष्णु त्यसै स्थलमा प्रकट हुनुभयो र प्रसन्न हुँदै वर दिने विचारले भन्नुभयो ॥२९-३३॥

विष्णुले भन्नुभयो - हे भक्त ! तिमी धन्य रहेछौ, तिमीले आफ्नो कर्तव्यको पालन गर्‍यौ, पूर्वजन्ममा गरेको स्नानले गर्दा तिमी पापबाट मुक्त भयौ। त्यसपछि फेरि तिमीले यस तीर्थमा स्नान गर्‍यौ। मेरो यस तीर्थमा स्नान गरेको हुनाले तिमी पनि पापरूपी काँचुलीलाई फालेर मेरै शरीरका रूपमा परिणत भयौ, यसमा सन्देह छैन। चाण्डाल होस् वा ब्राह्मण, चाहे जोसुकैले पनि यदि मेरो यस तीर्थमा स्नान गर्‍यो भने त्यो व्यक्ति दोस्रो म नै हुन्छ अर्थात् विष्णुरूप हुन्छ ॥३४-३६॥

१२. समुद्भूतः सुधीमान् स, इति न.सं.पु.पाठः। १३. द्वितीयो मत्कलेवरः इति न.सं.पु.पाठः।

अद्यप्रभृति चाऽऽर्य त्वं सखा मम भव द्विज। यावच्च न भवेत्कल्पस्तावद्वत्स स्थिरः सखा ॥३७॥
वदिष्यन्ति त्रिलोकास्त्वां नरनारायणं सदा। आवयोर्वत्स नामभ्यां यावत्तिष्ठति मेदिनी ॥३८॥
अज्ञानाद्रौद्रतापाच्च स्नानं कृतं त्वया पुरा। तस्मान्मुक्तिञ्च प्राप्तव्यां मम सङ्गाच्च प्राप्स्यसि[१४] ॥३९॥
नर गच्छ मया सार्द्धं यत्र सिद्धेश्वरः स्थितः। तपस्तप्तुं रहः सेविष्यावहे शङ्करं सदा[१५] ॥४०॥
भविष्यन्ति कलौ चाऽत्र सत्यधर्मरता नराः। युगत्रये च तिष्ठन्ति सत्यधर्मदयापराः[१६] ॥४१॥
यत्र कुत्रापि कुर्वन्ति वाग्वत्यां ये जलाप्लवम्। मूर्त्तयो मे भविष्यन्ति स्नातकास्ते न संशयः ॥४२॥
प्रणम्याऽऽदौ पशुपतिं व्रजावो हि ततः सुखम्। तत्र तच्चरणाब्जञ्च हे नर ! सेवयावहे[१७] ॥४३॥

नर उवाच

अहो भाग्यं महाभाग्यं क्षुद्रस्य मेऽधुना विभो। भवता विष्णुना सम्यगनुग्रहः कृतो मयि ॥४४॥
अहो भाग्यमहो मेऽद्य योगिभिर्यो न[१८] दृश्यते। कृछ्रादपीतरैर्ध्येयः स मे स्यान्नेत्रगोचरः[१९] ॥४५॥
यो ध्येयो[२०] योगिभिः स्वान्ते चाऽऽजन्माभ्यासकैर्वरैः। तेन सम्भाषणं सार्द्धं भाग्यं मेऽद्य भवेद्विभो ॥४६॥

---

हे आर्य ! हे ब्राह्मण ! आजदेखि तिमी मेरा मित्र भयौ। एककल्प पूर्ण नभएसम्म तिमी मेरा स्थायी मित्र बन्नेछौ। हे बाबु ! जहाँसम्म यो पृथ्वी रहन्छ त्यहाँसम्म तीनै लोकका प्राणीहरूले तिमी र मलाई नरनारायण भन्नेछन्। पहिले तिमीले ज्ञान नभईकन अत्यन्त गर्मीको कारणले यस तीर्थमा स्नान गरेका थियौ। त्यसैले तिमीले मुक्ति प्राप्त गर्न सकेनौ, अब मेरो सङ्गतले गर्दा तिमीलाई मुक्ति प्राप्त हुनेछ। हे नर ! जहाँ सिद्धेश्वर महादेव रहनुभएको छ त्यस्तो सुखदायक तपस्थलीमा गएर तपस्या गरौँ। मसितै हिँड, शिवजीको सेवा गरौँ ॥३७-४०॥

कलियुगमा सत्यधर्ममा तत्पर भएका व्यक्तिहरू यहाँ आएर बस्नेछन्, अन्यत्र सत्यधर्ममा निष्ठा राख्ने मानिस पाइने छैनन्। सत्य, त्रेता र द्वापर युगमा अन्यत्र सत्य, धर्म तथा दयाको नाश हुँदैन र उनीहरू सबैले यहाँ तपस्या गर्दछन्। जुनसुकै क्षेत्रको भए पनि वाग्वतीको प्रवाहमा डुबुल्की मारेर ज-जसले स्नान गर्छन्, ती सबै मेरै स्वरूप हुन्छन्, यसमा शङ्का छैन। हे नर ! पहिले भगवान् पशुपतिनाथलाई नमस्कार गरौँ। त्यसपछि आनन्दसित त्यस ठाउँमा जाऔँ र निरन्तर उहाँका चरणारविन्दको सेवा गरौँ ॥४१-४३॥

नरले भने - हे प्रभु ! म छुद्रको अहिले आएर ठूलो भाग्योदय भयो, ममाथि हजुरले ठूलो अनुग्रह गर्नुभयो। साँच्चै मेरो ठूलो भाग्य रहेछ। योगीहरूले पनि कहिल्यै देख्न नसक्ने र अरूले पनि बडो मुस्किलसित साधनाले मात्र प्राप्त गर्न सक्ने भगवान्‌लाई मैले सामुन्ने देख्न र कुराकानी गर्न पाएँ। हे भगवन् ! जन्मदेखि नै साक्षात्कारका लागि साधना गर्ने योगीहरूले जसको ध्यान गर्छन् त्यस्ता ईश्वरसित मैले आज कुराकानी गर्न पाएँ, मेरो ठूलो भाग्य रहेछ ॥४४-४६॥

---

१४. तस्मान्मुक्तिमिहालब्धं मम सङ्गाल्लभिष्यसि इति न.सं.पु.पाठः।
१५. तपस्तप्तुं रहः सौख्यं सेविष्यावः शिवं सदा इति न.सं.पु.पाठः।
१६. सत्यधर्मदयाव्ययात् इति न.सं.पु.पाठः।
१७. सेवयावो नरानिशम् इति न.सं.पु.पाठः।
१८. यो न इति न.सं.पु.पाठः।
१९. स्याच्चक्षुगोचरः इति न.सं.पु.पाठः।
२०. यं ध्येयम् इति न.सं.पु.पाठः।

विष्णुरूपेण मे दिव्यो दत्तो वरश्च शम्भुना। तपोभिर्दुर्लभश्चेह भाग्यं मेऽतः परं किमु ॥४७॥
सखा कृतो ह्यहं लोके भवता च सुदुर्लभः। सुदुर्लभञ्च मे भाग्यं किं विधेयमतः परम् ॥४८॥
कृत्वा सेवां हरेर्भक्त्या विष्णो रुद्रात्मनस्तव। आभाषणाद् व्रजन् सार्द्धं जीवन्मुक्तो भवाम्यहम् ॥४९॥
विष्णवे सर्वरूपाय सर्वज्ञविष्णवे नमः। आत्मने सर्वजीवाय ह्यगोचर नमोऽस्तु ते ॥५०॥
संसारसागरे मग्नः प्रोद्धृतो येन वा ह्यहम्। कारुण्यरज्जुना बद्ध्वा तस्मै तुभ्यं नमो नमः ॥५१॥
व्रजाम्यहं त्वया सार्द्धं यत्र सिद्धेश्वरो हरः। क्षमस्व मेऽपराधं त्वं सर्वज्ञानाय ते नमः ॥५२॥

स्कन्द उवाच

इत्याकर्ण्य हि तेनोक्तं स विष्णुर्भक्तवत्सलः। ययौ पशुपतेः सार्द्धं ततोऽन्तिकं नरेण वै ॥५३॥
प्रणेमतुश्च तौ भक्त्या देवं पशुपतिं भवम्। पातयित्वा क्षितौ देहञ्चाऽष्टाङ्गैर्दण्डवन्मुदा ॥५४॥
संस्तूय च[२१] तदात्मानौ परिक्रम्य पुनः पुनः। भक्त्या स्नात्वा च वाग्वत्यां मुदाऽप्रार्थयतां वरम् ॥५५॥
ततो लब्ध्वा वरौ तौ हि तद्भक्त्या जग्मतुर्मुने। यत्र सिद्धेश्वरो रुद्रो हिमवतः सुशेखरे ॥५६॥
तदादि तेन सार्द्धञ्च गिरिं बदरिकाश्रमम्। न मुचन्ति च विष्णुर्वै हिमवद्गिरिशेखरे ॥५७॥
समर्च्य सततं भक्त्या यत्र सिद्धेश्वरञ्च वै ॥५८॥
तप्तवन्तौ सुखं तौ हि ततो धन्यो हि तद्गिरिः। पुरा व्रतावसाने सा बद्रिकाद्रौ ययौ मुने ॥५९॥
सिद्धेश्वरं समभ्यर्च्य धर्मयुक्ता च पार्वती। अलकादपतद् घर्म उवाह नदीरूपतः[२२] ॥६०॥

---

भगवान् शङ्करले तपस्या गर्दा पनि प्राप्त हुन नसक्ने विष्णुरूपको दर्शनरूप दिव्य वर मलाई दिनुभयो, यसभन्दा बढी मेरो भाग्य के हुन्छ र ?। यस संसारमा हजुरले मलाई अत्यन्त दुर्लभ साथी बनाउनुभयो, यसभन्दा बढी मेरो अहोभाग्य के हुन सक्छ र ?। हे विष्णु ! रुद्रस्वरूप हजुरको भक्तिपूर्वक सेवा गरेर कुराकानी गर्दा गर्दै हिँड्दा हिँड्दै म जीवन्मुक्त हुन्छु। हे अगोचर भगवन् ! व्यापक रूप लिने, सर्वज्ञ, विष्णुस्वरूप र सम्पूर्ण जीवका आत्मस्वरूप भएका हजुरलाई नमस्कार छ। संसाररूपी समुद्रमा डुबेको मलाई हजुरले करुणारूपी डोरीले बाँधेर उद्धार गर्नुभयो, त्यस्ता हजुरलाई बारम्बार नमस्कार छ। हे सर्वज्ञ ! जहाँ सिद्धेश्वर महादेव रहनुभएको छ, त्यसै स्थलमा म हजुरसित जान्छु। मेरो अपराध क्षमा गर्नुहोस्, सर्वज्ञ हजुरलाई नमस्कार छ ॥४७-५२॥

कार्तिक स्वामीले भन्नुभयो – नरको यस्तो स्तुति सुनेर भक्तवत्सल भगवान् विष्णुलाई नरलाई साथै लिएर पशुपतिको नजिकै जानुभयो। नर र नारायण दुबैले पृथ्वीमा शरीर झुकाएर आनन्दसित दण्डवत् गर्दै भक्तिपूर्वक पशुपतिलाई नमस्कार गर्नुभयो। भक्तिपूर्वक वाग्वतीमा स्नान गरी रुद्रस्वरूप भएका दुबै देवताले बारम्बार पशुपतिको परिक्रमा गरेर प्रसन्न हुँदै स्तुति गरी वर माग्नुभयो। त्यसपछि ती दुईले वर प्राप्त गरेर जहाँ सिद्धेश्वर महादेव बस्नुहुन्थ्यो, त्यही हिमालयको शिखरमा तपस्या गर्न जानुभयो। त्यसै दिनदेखि लिएर हिमालयको शिखरमा रहेको बदरिकाश्रमलाई नरका साथ रहनुभएका भगवान् विष्णले छोड्नुभएको छैन ॥५३-५७॥

जहाँ सिद्धेश्वर हुनुहुन्थ्यो, त्यहाँ गएर उहाँलाई भक्तिपूर्वक बारम्बार पूजा गरेर नर र नारायणले तपस्या गर्नुभयो। त्यसै समयदेखि त्यो पर्वत धन्य भएको छ। हे मुनि ! अघि व्रत समाप्त गरेर धर्मात्मा पार्वती सिद्धेश्वरको पूजा गर्न बदरिकाश्रममा जानुभएको थियो। त्यसपछि धर्मात्मा पार्वतीले सिद्धेश्वर महादेवको पूजा गर्नुभयो। पार्वतीको सिउँदोबाट जुन पसिना झर्‍यो, त्यही नदी भएर बग्यो। त्यो देखेर सिद्धेश्वर महादेवले अत्यन्त खुसी हुँदै पार्वतीको कपालका रौंबाट पैदा भएको त्यस नदीमा स्नान गर्नुभयो ॥५८-६०½॥

---

२१. संस्तुत्वा च इति न.सं.पु.पाठः।    २२. घर्मो नदीभूता उवाह सा, इति न.सं.पु.पाठः।

प्रेक्ष्य सिद्धेश्वरस्तां वै सस्नौ तस्यां प्रहर्षितः । ततो रुद्रश्च सम्प्रेक्ष्य नदीं तदुदकोद्भवाम् ॥६१॥
स्तुत्वा नामाभिधानञ्च तस्या नाम्ना चकार वै । यस्माद्देव्यलकोद्भूता साक्षात्सुधाप्रवाहिनी ॥६२॥
तस्मादलकनन्दे त्वं त्रैलोक्यपावनी भव । ब्रह्मादयः सुराश्चान्ये सस्नुस्तस्यां मुनीश्वराः ॥६३॥
सम्पूज्य विधिवद्भक्त्याऽलकनन्दां मुदा तदा । स्नात्वा चाऽलकनन्दायां गिरिं बदरिकाश्रमम् ॥६४॥
प्रपश्यति हरेः स्थानं तस्य पुण्यफलं शृणु । सप्तजन्मार्जितैः पापैर्विनिर्मुक्तश्च सान्वयः ॥६५॥
इहलोकं परित्यज्य विष्णुलोकं स गच्छति । यश्चाऽऽरोहति तच्छैलं विष्णुस्थानं पवित्रकम् ॥६६॥
शिवात्मकं महाविष्णुं स्मरन् धिया हि भक्तिभिः । वाजपेयाश्वमेधानां फलं प्राप्य पदे पदे ॥६७॥
भास्करायुतयानस्थो विष्णुलोकं सुखं व्रजेत् । उदकुण्डजले स्नात्वा बदरीशं प्रपश्यति ॥६८॥
स एव विष्णुदेहश्च जीवन्मुक्तो न संशयः । यस्त्रिविक्रमगङ्गायां स्नात्वा भक्त्या तपःस्थितम् ॥६९॥
विष्णुं पश्यति रुद्रञ्च तस्य पुण्यफलं शृणु । सप्तजन्मकृतैः पापैः स मुक्तो नात्र संशयः ॥७०॥
इहलोकं परित्यज्य स गच्छेत्परमां गतिम् । सिद्धेश्वरं महालिङ्गं सकृत्पश्यति तत्र यः ॥७१॥
लीनो भवति तल्लिङ्गे सदेहो नात्र संशयः । न पुनर्जायते योनौ मरणं नास्ति तस्य च ॥७२॥
दुःखार्णवे महाघोरे परित्यज्य च संसृतिम् ।

एतत्प्रशंसा कथिता मया ते भक्त्याऽऽर्य वै बद्रिकपर्वतस्य ।
प्रश्नश्च भूयो मयि कीदृगस्ति सुखेन[२३] पृच्छाऽऽशु यथाऽस्ति वाञ्छा ॥७३॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे बरदिकाश्रममाहात्म्यन्नाम सप्तपञ्चाशत्तमोऽध्यायः ॥५७॥

---

त्यसपछि भगवान् रुद्रले पनि त्यसरी जल भएर बगेकी नदीलाई देखेर स्तुति गर्नुभयो र त्यस नदीको नाम पनि त्यस्तै किसिमको अर्थात् अलकनन्दा भनेर राख्नुभयो र भन्नुभयो – हे देवी ! तिमी साक्षात् अमृतमय प्रवाहको रूप लिएर अलकबाट उत्पन्न भएकी हुँदा तिमीलाई मैले अलकनन्दा भनें । तिमी तीनै लोकलाई पवित्र तुल्याउने नदी बन । यति शिवजीले भनेपछि ब्रह्मा आदि गरेका देवता र अरू ऋषिहरूले पनि विधिपूर्वक अलकनन्दाको पूजा गरेर तिनैको जलमा स्नान गरे । ।६१–६३½॥

हे अगस्त्य मुनि ! जसले भक्तिपूर्वक अलकनन्दाको पूजा गरी तिनको जलमा स्नान गरेर बदरिकाश्रममा रहेका भगवान्‌को दर्शन गर्छन् तिनको पुण्यफल के हुन्छ, सुन्नुहोस् । जसले त्यसरी पूजा र स्नान गर्छन् ती मानिस सात जन्मसम्म गरेका पापबाट मुक्त भएर यो लोक छोडेपछि वंशसहित विष्णुलोकमा जान्छन् । शिवस्वरूप विष्णु भगवान्‌को स्मरण गर्दै ज्ञान र भक्तिले युक्त भएर जुन मासिन पवित्र विष्णु भगवान्‌को निवासस्थल त्यस पर्वतमा चढ्छ, त्यसले पाइलैपिच्छे वाजपेय र अश्वमेध यज्ञ गरेको फल प्राप्त गर्छ, त्यो दश हजार सूर्यजस्तो चम्किलो विमानमा चढेर सुखपूर्वक विष्णुलोक जान्छ ॥६४–६७॥

जुन मानिसले उदकुण्डको जलमा स्नान गरेर बदरीनाथ भगवान्‌को दर्शन गर्छ, त्यो साक्षात् विष्णुको अवतार हो र जीवन्मुक्त व्यक्ति हो, यसमा सन्देह छैन । जसले पवित्र गङ्गामा स्नान गरेर तपस्यामा संलग्न भगवान् विष्णु तथा शिवजीको दर्शन गर्छ, त्यसको पुण्यफल म बताउँछु, सुन्नुहोस् – त्यस्तो प्राणी सात जन्मसम्म गरेका पापबाट मुक्त हुन्छ, यस संसारलाई छोडेपछि परमगतिमा पुग्छ, यसमा शङ्का छैन ॥६८–७०॥

जसले सिद्धेश्वर नाम गरेको महालिङ्गलाई एकपटक मात्रै पनि दर्शन गर्छ, त्यो व्यक्ति शरीरै सहित त्यस लिङ्गमा लीन हुन पुग्छ, यसमा सन्देह छैन । संसारलाई त्यागेपछि डरलाग्दो दुःखरूपी समुद्रमा त्यसले जन्म लिनुपर्दैन, त्यसपछि त मरण नै हुँदैन ॥७२½॥

हे आर्य ! मैले भक्तिपूर्वक आज बदरिकाश्रम पर्वतको माहात्म्य तपाईंलाई बताएँ । अब तपाईंको के सुन्ने इच्छा छ? त्यो सोध्नुहोस् ॥७३॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डको बदरिकाश्रममाहात्म्यनामक सन्ताउन्नौं अध्याय पूर्ण भयो ।

---

२३. त्वं तच्च इति न.सं.पु.पाठः ।

# अष्टपञ्चाशत्तमोऽध्यायः

## पार्वतीविवाहविषये नारदस्य परिकल्पना

अगस्त्य उवाच

कथं प्रतारितो विष्णुर्वचनान्नारदेन च। गिरिजया तया देव्या कदा च शिखिवाहन ॥१॥
तत्कारणं कथां चैव वदतु मेऽधुना विभो। चित्रं मे जायते स्वान्ते श्रोतुमिच्छाम्यहं च तत् ॥२॥

स्कन्द उवाच

शैलराजे हि कैलासे यद् वृत्तान्तं पुराऽभवत्। तत्र श्रुता च तद्वार्त्ता देवीशङ्करयोर्मिथः ॥३॥
पार्वत्या चैव संपृष्टं शङ्करं प्रति यन्मुने। तत्सर्वं ते प्रवक्ष्यामि मुने शृणु समाहितः ॥४॥
नीलकण्ठोत्तरे भागे दूरे समैकयोजने। व्योमकूटे हिमाद्रेश्च गृहमासीत्सुशोभनम् ॥५॥
सर्वरत्नमयं दिव्यं रत्नतेजोऽभिसारितम्। तस्य प्राङ्गणके वेदी चतुरस्रसमन्विताः ॥६॥
अचीक्रिडद्धि तस्याञ्च पार्वती सखीभिः समम्। प्रगुम्फन्ती च[1] पुष्पाणि ह्युद्याने चाऽवचित्य सा ॥७॥
तस्मिन्काले मुनिश्रेष्ठो ब्रह्ममनःसमुद्भवः। नारदो ब्रह्मलोकाद् वै चाऽवततार ह्यम्बरात् ॥८॥
यदृच्छया गतस्तत्र हिमवद्भवनोपरि। अम्बरान्नारदो धीर ताम्बालाञ्च ददर्श वै ॥९॥
क्रीडन्तीं स्वेच्छया पुष्पैः सखीभिः परिवारिताम्। भासयन्तीं स्वभासा वै रत्नगेहं दिशो दश ॥१०॥
दिव्यरत्नयुतैर्वेषैर्भूषिताञ्च विभूषणैः। केयूरहारवलयैर्विभ्राजितां महाधनैः ॥११॥
ददर्शाऽव्यक्तरूपाञ्च नारदो मुनिसत्तमः। व्योम्नि सूर्य इवाऽव्यक्तो यथा भस्मनि पावकः ॥१२॥
तस्या मुखञ्च सम्प्रेक्ष्य स्थगितश्च मुमोह सः। क्षणं देवं समाधाय चिन्तयामास[2] विह्वलः ॥१३॥

---

## अध्याय – ५८

### पार्वतीविवाहका विषयमा नारदको परिकल्पना

अगस्त्य मुनिले भन्नुभयो – हे कार्तिक स्वामी ! नारदको भनाइअनुसार काम गर्दा भगवान् विष्णु कसरी पार्वतीबाट ठगिनुभयो ? त्यसको मूल कारण के हो ? मलाई अचम्म लागेको छ। म सुन्न चाहन्छु, त्यो कथा मलाई अहिले नै बताइदिनुहोस् ॥१–२॥

कार्तिक स्वामीले भन्नुभयो – अघि कैलास पर्वतमा जे जस्तो घटना भएको थियो, त्यो घटनाबारे पार्वती र शिवजीको परस्पर वार्तालापबाट मैले सुनेको थिएँ। पार्वतीले भगवान् शङ्करलाई जे सोध्नुभएको थियो, सावधान भएर सुन्नुहोस्, त्यो सबै म बताउँछु ॥३–४॥

नीलकण्ठ पर्वतको उत्तरपट्टि चार कोस पर व्योम नाम गरेको टाकुरामा सबै किसिमका रत्नका कान्तिले झलझल आकार भएको दिव्य एक अत्यन्त सुन्दर मन्दिर थियो। त्यसको चोकमा चार कुना परेको मण्डप छ। त्यसमा आफ्ना सङ्गिनीहरूसित पार्वती क्रीडा गर्नुहुन्थ्यो, बगैँचाका फूलहरू टिपेर मालाहरू गाँस्नुहुन्थ्यो ॥५–७॥

त्यसै समयमा ब्रह्माजीका मानसपुत्र मुनिश्रेष्ठ नारद ब्रह्मलोकबाट आकाशमार्गले ओर्लँदै हुनुहुन्थ्यो। त्यस हिमालयमा रहेको मन्दिरमाथिको आकाशबाट आफूखुसी आउन लाग्नुभएका नारदले युवा–अवस्थातिर लागेकी पार्वतीलाई देख्नुभयो। पार्वती आफ्नो इच्छानुसार सङ्गिनीहरूसित मिलेर फूलहरू लिएर खेल्दै हुनुहुन्थ्यो। उहाँको कान्तिले गर्दा रत्नले बनेको घर र दशै दिशा चम्किला भएका थिए। उहाँले दिव्य रत्नले युक्त भएको वेश पहिरनुभएको थियो, महँगा बाला, हार आदि गहनाहरूले सुशोभित हुनुहुन्थ्यो ॥८–११॥

मुनिश्रेष्ठ नारदले आकाशमा लुकेर रहेका सूर्य र खरानीभित्र रहेको आगोलाई जस्तै गरी अव्यक्त रूपमा रहेकी पार्वतीलाई देख्नुभयो। उहाँको मुख देखेर परिश्रमले थाकेका नारदजी पनि मोहित हुनुभयो। त्यसपछि विह्वल हुँदै एकछिन भगवान्लाई सम्झिएर विचार गर्नुभयो ॥१२–१३॥

---

१. प्रगन्थयन्श्च इति न.सं.पु.पाठः। २. चाचिन्तयत् स इति न.सं.पु.पाठः।

कस्मै योग्या त्वियं कन्या चेति चिन्ताकुलोऽभवत्। विष्णवे चैव सा योग्या तदन्यथा क्वचिन्नहि ॥१४॥
रूपशीलगुणैर्योग्या ह्यस्या एव पतिर्हरिः। तस्मादद्यैव वक्तव्यं गत्वा बदरिकाश्रमम् ॥१५॥
इति कृत्वा ययौ तत्र यत्र प्रतप्तवान् हरिः। बद्रिकाद्रौ गतः[३] शीघ्रं नरनारायणात्मकः ॥१६॥
ददर्श भगवान् तत्र नारदञ्चाऽऽगतं मुदा। व्योम्नो वीणायुतं भक्तं गायन्तं रुद्रमीश्वरम्[४] ॥१७॥
उदतिष्ठत्तदा विष्णुः स्वकीयादासनाद् द्रुतम्। प्रणमतुर्मिथो द्वौ च हरिस्तमुपवेशयत् ॥१८॥
अपूपुजन्मुनिं विष्णुर्बहुमानपुरस्सरम्। मधुपर्कम्पुनर्दत्त्वा चाऽपृच्छत्कुशलं मुनिम् ॥१९॥

विष्णुरुवाच

स्वागतं भो मुनिश्रेष्ठ भद्राणि तव वर्त्मसु। ब्रह्मणो ब्रह्मलोके च शर्वलोके तथा पुनः ॥२०॥
अहोभाग्यमहोभाग्यं निर्जनस्याऽचलौकसः। अत्राऽऽगतो यतो विप्रो ब्रह्मणो मानसोद्भवः ॥२१॥
अद्यैव पूयते गात्रं ममाऽऽश्रमः सपर्वतः[५]। तपसः फलमद्यैव तवाऽङ्घ्रिस्पर्शनाद्यतः ॥२२॥
त्रिकालञ्च मया ज्ञातमद्यैव च महामुने। पूतात्मानं कृतात्मानं मन्ये त्वां तव दर्शनात्[६] ॥२३॥
दर्शनं ते पुरा पुण्याल्लब्धं मयेह वै पुनः। भविष्यति च देहोऽयं परत्र पुण्यभाजनम् ॥२४॥
भवतीह ममैवाऽऽर्य सुपवित्रं कलेवरम्। जानाम्यहं[७] मुनिश्रेष्ठ स्पर्शनाद् भवतस्तनोः ॥२५॥

---

यी कन्या कसलाई दिनु उचित होला ? विष्णुलाई नै दिनु ठीक हुन्छ, अरू कसैलाई दिनु उचित हुँदैन। यिनी रूप, शील र गुणले सम्पन्न भएकी छिन्, यिनका पति भगवान् विष्णु नै हुन सक्नुहुन्छ। त्यसैले आज नै बदरिकाश्रम गएर यो कुरा विष्णुलाई बिन्ती गर्नुपर्‍यो भन्ने नारदजीले विचार गर्नुभयो ॥१४-१५॥

यस्तो सोचेपछि नारद जहाँ भगवान् विष्णु नरनारायणका रूपमा बदरिकाश्रममा तपस्या गरिरहनुभएको थियो, त्यसै ठाउँमा तुरुन्त जानुभयो। हातमा वीणा लिएर शिवजीको कीर्तन गर्दै आकाशमार्गमा आउन लागेका नारदलाई भगवान् विष्णुले देख्नुभयो, अनि आसनबाट उठेर उहाँले नारदलाई नमस्कार गर्नुभयो। नारदजीले पनि विष्णुलाई नमस्कार गर्नुभयो। त्यसपछि उहाँलाई लगेर विष्णुले बडो सम्मानका साथ आसनमा बसाल्नुभयो र आतिथ्यसत्कार गर्नुभयो। मधुपर्क दिएपछि नारदजीलाई विष्णुले कुशल प्रश्न गर्नुभयो ॥१६-१९॥

विष्णुले भन्नुभयो – हे मुनिश्रेष्ठ नारदजी ! तपाईंको स्वागत छ। बाटोमा तपाईंलाई सुविस्ता भयो वा भएन ? ब्रह्मलोकमा ब्रह्मालाई त सुविस्तै छ ? त्यस्तै शिवलोकमा शिवजीलाई पनि आनन्द छ वा छैन ?। एकान्त पर्वतवासी मेरो घरमा ब्रह्माका मानसपुत्र नारदजी पाल्नुभयो, मेरो ठूलो भाग्य रहेछ। आज मेरो शरीर पवित्र भयो, पर्वतले सहित यो आश्रम पनि पवित्र बन्यो। हजुरको पाउ छुन पाएर तपस्याको फल मैले आज पाएँ। हे मुने ! हजुर आउनुभएको हुनाले म आजदेखि त्रिकालज्ञ भएँ, मेरो आत्मा पवित्र र कृतकृत्य भयो। पूर्वजन्मको पुण्यको प्रभावले गर्दा मैले हजुरको दर्शन गर्ने मौका पाएँ, त्यसैले मेरो यो शरीर अर्को जन्ममा पनि पवित्र हुनेछ। हे मुनिश्रेष्ठ ! हे आर्य ! हजुरको शरीरको स्पर्श पाएर मेरो शरीर अत्यन्त पवित्र भन्ने कुरा मैले बुझेको छु ॥२०-२५॥

---

३. मुनिः इति न.सं.पु.पाठः।
४. व्योम्नो वीणाधृतं भक्तं गायन् रुद्रयशो मुहुः इति न.सं.पु.पाठः।
५. ममाश्रमं सपर्वतम् इति न.सं.पु.पाठः।
६. तवागमनकारणात् इति न.सं.पु.पाठः।
७. पवित्रात्मा कलेवरः। जानीमहे ..., इति न.सं.पु.पाठः।

नारद उवाच

न वक्तव्यं विभोर्मह्यमित्थं हि भवता वचः । त्रैलोक्येशेन चैकेन भक्तायाऽनुचराय हि[८] ॥२६॥
सर्वभूतमयो ब्रह्मा सर्वतेजोमयो हरः । सर्वदेवमयस्त्वञ्च न भेदो वस्तयोर्मिथः ॥२७॥
यथा रुद्रस्तथा विष्णुर्यथा विष्णुस्तथा विधिः । तयोश्चैवाऽऽत्मरूपस्त्वं तथाविधस्तयोः पुनः ॥२८॥
ध्यातव्यो योगिनां साक्षाद् हृत्पद्मे च महोज्ज्वले । त्वमेव हि तयोर्मुक्तिर्जीवानां[९] च सुजृम्भकः ॥२९॥
प्रणवाख्याय देवाय जीवरूपाय ते नमः । अव्यक्ताय सलक्ष्याय सर्वरूपाय ते नमः ॥३०॥
यं विभृत्य[१०] प्रजीवन्ति जीवाश्च[११] जङ्गमात्मजाः । तस्मै च देवदेवाय महाविष्णो नमोऽस्तु ते ॥३१॥

स्कन्द उवाच

ततो मुनेः समाकर्ण्य स्तवेन चरितं वचः । अपृच्छत्तं पुनर्विष्णुस्तत्राऽऽगमनकारणम् ॥३२॥

विष्णुरुवाच

मुनीश्वर द्विजश्रेष्ठ वक्तव्यं मे समुच्यताम् । यदर्थमागतोऽसि त्वमिहाऽऽगमनकारणम् ॥३३॥
अथवा हि पुनातुं मामत्र समागतो मुने । अथवा प्रेरितः कैश्चिज्जनेन केनचिद् वद ॥३४॥

---

नारदजीले भन्नुभयो – हे प्रभु ! तीनै लोकका अधिपति भएर पनि एक्लै हिमालयमा बस्ने हजुरले यो सेवक तथा भक्तलाई यसरी भन्न हुँदैन । सम्पूर्ण प्राणीका स्वरूप ब्रह्मा हुनुहुन्छ, सम्पूर्ण तेजःस्वरूप भगवान् शङ्कर हुनुहुन्छ, हजुर सम्पूर्ण देवतामय हुनुहुन्छ । उहाँहरूसित हजुको भेद छैन अर्थात् हजुरहरू तीनै जनाको स्वरूप एउटै हो । जस्तो शिवजी हुनुहुन्छ, त्यस्तै विष्णु हुनुहुन्छ, जस्तो ब्रह्माजी हुनुहुन्छ, त्यस्तै विष्णु हुनुहुन्छ । हजुर ती दुबैको आत्मस्वरूप हुनुहुन्छ र ती दुबैमा ती दुई आत्मस्वरूपमा हजुर विराजमान हुनुभएको छ, त्यस्तै उहाँहरूको पनि अवस्था छ ॥२६–२८॥

योगीहरूले आफ्नो हृदयमा रहेको उज्यालो कमलमा हजुरकै ध्यान गर्छन्, त्यस्ता योगीहरूले हजुरबाट नै मुक्ति पाउँछन् र जीवित अरू प्राणीका निमित्त पनि हजुर नै मुक्तिदाता हुनुहुन्छ । प्रणवनामबाट प्रसिद्ध देवस्वरूप र सर्वजीवस्वरूप हजुरलाई नमस्कार छ । अव्यक्त रूप, लक्ष्यरूप, सर्वस्वरूप हजुरलाई नमस्कार छ । जसका आधारमा जङ्गमहरू अर्थात् हिँड्ने प्राणीहरू जीवित भएर रहन्छन् त्यस्ता देवाधिदेव हे महाविष्णु ! हजुरलाई नमस्कार छ ॥२७–३१॥

कार्तिक स्वामीले भन्नुभयो – त्यसपछि नारदमुनिले गरेको स्तुति सुनेर भगवान् विष्णुले उहाँ आउनुको कारण सोध्नुभयो ॥३२॥

विष्णुले भन्नुभयो – हे ब्राह्मणश्रेष्ठ मुनिवर नारदजी ! तपाईं के कति कारणले यहाँ आउनुभएको हो ? मलाई यथार्थ रूपमा बताउनुहोस्, अथवा मलाई पवित्र तुल्याउन यहाँ आउनुभएको हो कि ? वा कुनै व्यक्तिले पठाएर पो आउनुभएको हो कि? त्यो कुरा भन्नुहोस् ॥३३–३४॥

---

८. किङ्कराय स्वभक्तिने इति न.सं.पु.पाठः ।
९. जीविनः इति न.सं.पु.पाठः ।
१०. विभर्त्यं इति न.सं.पु.पाठः ।
११. जीविनः इति न.सं.पु.पाठः ।

नारद उवाच

नाहं ते प्रेरितः कैश्चिदत्र ब्रह्मसनातन। काञ्चिद्वार्त्तां समादाय वक्तुं यदृच्छयाऽऽगतः ॥३५॥
एका बाला मया दृष्टा गगनादतिसुन्दरी। हिमवतो गृहे दिव्ये महाकूटे सुशोभने ॥३६॥
प्राङ्गणे वेदिका तस्य नानारत्नोपशोभिते। क्रीडन्ती[१२] च मुहुः पुष्पैर्मुदा स्वसखीभिः समम् ॥३७॥
सुलोचना च बिम्बोष्ठी सर्वाभरणभूषिता। गौरी मधुरवाणी च वन्दनीया च जन्तुभिः[१३] ॥३८॥
तेजसा सूर्यतुल्या सा चाऽऽह्लादेन कलानिधिः। भासयन्ती स्वभाभिः सा दिशोऽक्रीडद् हिमालये[१४] ॥३९॥
ते प्रसादान्मया विष्णो द्विसप्तभुवनेषु च। न दृष्टं तादृशं रूपं तत्तुल्यञ्च कलेवरम् ॥४०॥
विचारितं धिया व्योम्नि कस्य योग्या भवेदिति। निर्णीतञ्च हरेर्योग्या तस्माद् वक्तुमिहागतः ॥४१॥

विष्णुरुवाच

मयापि वाञ्छितं कार्यं[१५] यत्ते मनसि विद्यते। कुर्याः शीघ्रञ्च तत्कार्यं मुने गत्वा हिमाचले ॥४२॥
कार्यकारणयोर्वेत्ता सर्वकार्यविशारद। सर्वमर्मज्ञ विप्रेश तस्माद्धेतोश्च[१६] गम्यताम् ॥४३॥

स्कन्द उवाच

निशम्य वचनं विष्णोर्नारदो लोकजृम्भकः। तदाज्ञाञ्च समादाय प्रययौ हिमवद्गृहम् ॥४४॥
ददर्शाऽऽशु समायान्तं हिमवानपि नारदम्। वीणावाद्यमहोल्लासं भवने स्वे कलापिनम् ॥४५॥
आसनाच्च समुत्तिष्ठन् मुनिं सम्प्रेक्ष्य सत्त्वरम्। हिमवानालयाद्वाह्यं प्रत्युद्ययौ प्रहर्षितः ॥४६॥
प्रणम्य नारदं शीघ्रं हिमवान्भक्तिभिर्मुदा। दिव्यासने समानीय समुपावेशयन्मुनिम् ॥४७॥
सम्पूज्य विधिवद् भक्त्या हिमवान्नारदं पुनः। पप्रच्छ कौशलीं वार्त्तां सर्ववार्ताविदं मुनिम् ॥४८॥

---

नारदजीले भन्नुभयो – हे सनातन ब्रह्मस्वरूप भगवन् ! म कसैले पठाएर आएको होइन, कुनै समाचार लिएर आफ्नै इच्छाले आएको हुँ। मैले आकाशबाट हेर्दा हिमालयको शिखरवर्ती दिव्य भवनमा एउटी अत्यन्त राम्री बालिकालाई देखें। उनी प्रसन्न भएर त्यस मन्दिरको विभिन्न रत्नद्वारा सुशोभित मण्डपमा आफ्ना सङ्गिनीहरूसित फूल लिएर क्रीडा गरिरहेकी थिइन्। ती कन्याका आँखा साह्रै राम्रा थिए, ओठ पाकेका गोलकाँक्रीजस्ता राता थिए, ती सबै किसिमका रत्नहरूले सुशोभित थिइन्, ती बालाको रङ्ग गोरो थियो, तिनी साँच्चै नै सबै प्राणीका निमित्त वन्दनीय थिइन् ॥३५-३८॥

ती बाला तेजले गर्दा सूर्यजस्ती देखिन्थिन्, सबैलाई आनन्द दिने हुँदा साक्षात् चन्द्रमा नै हुन् कि भनेजस्तो भान हुन्थ्यो, आफ्ना तेजले चारै दिशालाई उज्यालो तुल्याउँदै सङ्गिनीहरूसित ती बाला क्रीडा गरिरहेकी थिइन्। हे विष्णु ! मैले आजसम्म चौधै भुवनमा त्यस्तो रूप र शरीर देखेको थिइनँ, हजुरको कृपाले गर्दा देख्न पाएँ। अनि मैले विचार गरें – यी कन्या कसका निमित्त उपयुक्त होलिन् ? त्यसपछि यी कन्या विष्णुका लागि उपयुक्त हुन्छिन् भन्ने निर्णय गरेर म हजुरलाई यो निवेदन गर्न आएको हुँ ॥३९-४१॥

विष्णुले भन्नुभयो – जुन कुरा तपाईंको मनमा लागेको छ, मेरो पनि त्यही चाहना थियो। तपाईं सबै काममा निपुण हुनुहुन्छ, कुन कार्य हो ? कुन कारण हो ? अर्थात् पहिले के गर्नुहुन्छ ? आदि सबै विषय तपाईंलाई थाहा छ। त्यसैले हे मुनि ! हिमालयमा गएर चाँडै त्यो कार्य सम्पन्न गर्नुहोस् ॥४२-४३॥

कार्तिक स्वामीले भन्नुभयो – विष्णुको भनाइ सुनेर संसारलाई लट्ठ तुल्याउन सक्ने नारद मुनि उहाँको आज्ञा लिई हिमालयको घर गए। हिमालय पर्वतले पनि हर्षित मुद्रामा वीणा बजाउँदै आफ्नो घरमा आउन लागेका नारदलाई देखे। नारद आउन लागेको देखेर हिमालय तुरुन्तै आसनबाट उठेर खुसी हुँदै घर बाहिर निस्किए। हिमालयले प्रसन्न भएर भक्तिपूर्वक नारदजीलाई प्रणाम गरे र दिव्य आसनमा ल्याएर नारदलाई बसाए। त्यसपछि उनले भक्तिपूर्वक विधिविधानसित नारदजीको पूजा गरेर सम्पूर्ण वृत्तान्तका ज्ञाता ती मुनिसँग कुशल प्रश्न सोधे ॥४४-४८॥

---

१२. क्रीडयन्ती इति न.सं.पु.पाठः।
१३. जीविभिः इति न.सं.पु.पाठः।
१४. अक्रीडत्तत्र ताभिर्वै स्वभाभिर्भासयन् दिशः इति न.सं.पु.पाठः।
१५. वाञ्छितः कार्यः इति न.सं.पु.पाठः।
१६. तत्कारणाय इति न.सं.पु.पाठः।

हिमवानुवाच

अहोभाग्यमनाथस्य दीनस्य महदद्भुतम्। ब्रह्मात्मजो यतश्चाऽत्र समागतो ममालये ॥४९॥

अद्यैव भवनं पूतं ससानु ब्रह्मशेखरम्। अद्यैव च तपोवृक्षाः फलन्ति मे फलानि च ॥५०॥

श्रवणाद्दर्शनात्स्पर्शाद् भवतां ब्रह्मजन्मनाम्। पवित्रिता तनुर्मेऽद्य तवाऽङ्गस्पर्शनैः किमु ॥५१॥

स्वागतं ब्रह्मविद् तुभ्यं कुशलं चाऽस्ति नारद। तवाऽङ्गे ब्रह्मलोके च स्वर्गे चैव तथा पुनः ॥५२॥

अतः परं विभो मह्यं किं विधेयं वदाधुना। त्वत्सेवकाय दासाय वृत्तान्तं त्रिदिवस्य च ॥५३॥

नारद उवाच

न वक्तव्यं त्वया चेत्थं ब्रह्मसूनुञ्च मामपि[१७]। संसृष्टो ब्रह्मणा त्वं वै सर्वलोकहिताय च ॥५४॥

तस्मात्त्वमेव सर्वेषां मुमुक्षूणां विशेषतः। गतिर्हि हिमवन्नार्य प्राणिनाञ्च तपस्विनाम् ॥५५॥

त्वमेव च प्रपूतात्मा तपःसिद्धिस्त्वमेव च। अवसि त्वं तपःस्थानां पशुपतेरनुग्रहात् ॥५६॥

यदर्थमागतोऽत्राऽहं हिमवन् शृणु साम्प्रतम्। विष्णुना प्रेषितश्चाऽत्र सुतायास्तव कारणात् ॥५७॥

योग्यं योग्याय दातव्यमयोग्याय कदापि न। क्रियतां लघु कार्याणि ज्ञात्वेति हिमवंस्त्वया ॥५८॥

रत्नञ्च काञ्चनं योग्ये योजनीयं हिमालय। विराजते हि संयुक्तमायसे पित्तले नहि ॥५९॥

वासुदेवसमो देवस्त्रिलोकेषु न विद्यते। सुन्दरश्च महाविष्णुर्ब्रह्मशङ्करयोरपि ॥६०॥

तेजस्वी रूपवान् विष्णुः सर्वलोकदयारतः। सुशीलः सुगुणैर्युक्तः सर्वभूतनमस्कृतः ॥६१॥

अस्ति चेत्सम्मतः सार्द्धं मया त्वं हिमवन् ध्रुवम्। दीयतां स्वसुता तस्मै न कार्यमन्यचिन्तनम् ॥६२॥

---

हिमालयले भने – म अनाथ दुःखीको कत्रो ठूलो भाग्य रहेछ किनभने मेरो घरमा ब्रह्माजीका मानसपुत्र तपाईं पाल्नुभएको छ। हे नारदजी ! आज मेरो घर पवित्र भएको छ र यी पहाडका टाकुरा एवं चुचुराहरू पनि पवित्र भएका छन्। मैले गरेको तपस्यारूपी वृक्षको फल आज लागेको छ। हे द्विजवर्य ! तपाईंको नाम सुन्नाले मात्रै अथवा तपाईंलाई देख्नाले मात्रै पनि प्राणीहरूको शरीर पवित्र हुन्छ भने मैले त तपाईंको शरीरलाई स्पर्श नै गर्न पाएको छु। मेरो पुण्यको विषयमा बढी के भनौं ? हे ब्रह्मज्ञानी नारदमुनि ! तपाईंलाई मेरो स्वागत छ, तपाईं कुशलै हुनुहुन्छ ? ब्रह्मलोक र स्वर्गमा पनि सबै कुशलै छन् ? हे प्रभो ! मैले के सेवा गर्नुपर्‍यो ? त्यो कुरा र स्वर्गको हालखबर पनि तपाईंले आफ्नो सेवकलाई बताउनुहोस् ॥४९-५३॥

नारदले भन्नुभयो – तपाईंजस्ताले मजस्तो जाबो एउटा ब्राह्मणका छोराको यत्रो प्रशंसा गर्नु ठीक भएन, बरु तपाईंलाई ब्रह्माजीले सम्पूर्ण प्राणीहरूको हितका निमित्त सृष्टि गर्नुभएको हुँदा विशेष गरी मुक्तिको कामना गर्ने र तपस्वी प्राणीका निमित्त तपाईं नै गतिस्वरूप हुनुहुन्छ। पशुपतिनाथको अनुग्रहले गर्दा तपाईंको आत्मा अत्यन्त पवित्र बनेको छ। तपस्याको सिद्धि पनि तपाईंबाटै प्राप्त हुन्छ। तपस्वीहरूका रक्षक पनि तपाईं नै हुनुहुन्छ ॥५४-५६॥

हे हिमालय ! म जुन कारणले यहाँ आएको छु, त्यो कुरा सुन्नुहोस् – कुनै पनि योग्य वस्तु योग्यलाई नै दिनुपर्छ, अयोग्यलाई दिनुहुँदैन। विष्णुले तपाईंकी छोरीको कारणले गर्दा मलाई यहाँ पठाउनुभएको हो अर्थात् तपाईंकी छोरी विष्णुका लागि माग्न म आएको हुँ। विचार गरेर यो काम तुरुन्तै तपाईंले गर्नुपर्‍यो ॥५७-५८॥

हे हिमालय ! रत्नलाई सुनमै लगेर जोड्नुपर्छ, फलाम वा पित्तलमा लगेर जोड्यो भने सुनले समुचित शोभा पाउँदैन। वासुदेवजस्ता देवता तीनै लोकमा अरू छैनन्। ब्रह्मा र शिवजीभन्दा पनि महाविष्णु सुन्दर हुनुहुन्छ। विष्णु तेजस्वी हुनुहुन्छ, उहाँको सुन्दर रूप छ, सबै प्राणीहरूमाथि दया गर्नुहुन्छ, उहाँको शीलस्वभाव असल छ, सम्पूर्ण गुणले सम्पन्न हुनुहुन्छ, सबै प्राणीहरूले उहाँलाई नमस्कार गर्छन्। हे हिमालय ! यदि मेरो विचारसित तपाईंको सहमति छ भने आफ्नी छोरी विष्णुलाई दिनुहोस्, अरू कुनै कुराको सोच नगर्नुहोस् ॥५९-६२॥

---

१७. मह्यञ्च ब्रह्मसूनवे इति न.सं.पु.पाठः।

हिमवानुवाच

अहोभाग्यं ममैवाद्य सुतायाश्च विशेषतः। विष्णुर्यतो मया सार्द्धं संबन्धं कर्त्तुमिच्छति ॥६३॥
अतः परञ्च मे भाग्यं किं विधेयं मुनीश्वर। मानसो ब्रह्मणो दूतः समागतो विशेषतः ॥६४॥
कुलेनैव च शीलेन सौन्दर्येण गुणेन च[१८]। तैः सर्वदुर्लभैर्युक्तः सर्वमान्यो महाविभुः ॥६५॥
तेन च विष्णुना कन्या ममेयं प्रार्थ्यते यदि[१९]। प्रतिश्रुता मया तस्मै कन्येयं कुलभूषणा ॥६६॥
गत्वा च नारद श्रेष्ठ शीघ्रं विष्णोश्च सन्निधिम्। भराशिग्रहलग्नैश्च शुभं दिनं विचार्यताम् ॥६७॥

स्कन्द उवाच

हिमवता यदुक्तञ्च तत्समादाय नारदः। बदरिकाश्रमं शैलं यत्र विष्णुर्मुदा ययौ ॥६८॥
सत्कृत्य च पुनर्विष्णुः पप्रच्छ तञ्च नारदम्। कार्यकारणवेत्तापि तन्मायामोहितो मुने ॥६९॥

विष्णुरुवाच

स्वागतं तत्र वार्त्ताज्ञ मम कार्योपकारकः। तदर्थं वद निष्पन्नं यदर्थं भवता गतः ॥७०॥

नारद उवाच

मया गतं यदर्थञ्च तन्निष्पन्नं न संशयः। विष्णोः सिद्धं महत्कर्म वैवाहिकपरो भव ॥७१॥
तत्कार्यञ्च ममाग्रे हि हिमवता प्रतिश्रुतम्। दत्ता गरुडवाहाय कन्येयं मम सुन्दरी[२०] ॥७२॥

स्कन्द उवाच

तदा तदुत्सुको विष्णुस्तमाकर्ण्य प्रहर्षितः। नरेण सह तल्लग्नसुविचारं चकार हि ॥७३॥
विष्णुः सुलग्नं शुभभं विचार्य घस्रं ह्यवोचल्लघु नारदाय।
त्र्यहात्तदूर्ध्वं द्विज चाऽद्यतो वै विज्ञायतां[२१] मङ्गलवासरे तत् ॥७४॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे गौरीविवाहे नारदवाक्यन्नामाष्टपञ्चाशत्तमोऽध्यायः ॥५८॥

---

हिमालयले भने – आज मेरो र विशेष गरी मेरी छोरीको अहोभाग्य रहेछ किनभने मसित विष्णु भगवान् सम्बन्ध कायम गर्न खोज्दै हुनुहुन्छ। हे मुनीश्वर ! ब्रह्माको मानसपुत्र नै दूत भएर आउनुभएको छ भने यसभन्दा बढी मेरो भाग्यको बारेमा म के भनूँ ?। कुल, शील, गुण, सौन्दर्य आदि दुर्लभ विशेषताले युक्त भएका भगवान् विष्णु सबैका मान्य हुनुहुन्छ। यदि उहाँ नै मेरी छोरी माग्नुहुन्छ भने कुलकी भूषण भएकी यी कन्या उहाँलाई दिन मैले स्वीकार गरेँ। हे नारद मुनि ! तपाईं भगवान् विष्णुको नजिक तुरुन्तै जानुहोस् र नक्षत्र, राशि, ग्रह, लग्न विचार गरी शुभदिन तय गर्नुहोस् ॥६३-६७॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! हिमालयले जुन कुरा भने, त्यो सबै लिएर नारदमुनि प्रसन्न हुँदै जहाँ भगवान् विष्णु बस्नुभएको थियो, त्यो बदरिकाश्रममा जानुभयो। भगवान् विष्णुले पनि मायाबाट मोहित भएर कार्यकारणका वेत्ता नारदसँग भएको वृत्तान्तबारे सोध्नुभयो ॥६८-६९॥

विष्णुले भन्नुभयो – हे सर्वज्ञ नारदजी ! तपाईं मेरो कामको सहयोगी हुनुहुन्छ, तपाईंलाई स्वागत छ। जुन काम लिएर तपाईं जानुभएको थियो, त्यो काम सम्पन्न भयो वा भएन ? बताउनुहोस् ॥७०॥

नारदजीले भन्नुभयो – जुन काम लिएर म गएको थिएँ त्यो सम्पन्न भयो, ठूलो कार्य सिद्ध भयो। अब विवाहका लागि तयार हुनुहोस्। 'यी कन्या मैले गरुडवाहन विष्णुलाई दिएँ' भनेर मेरै अगाडि हिमालयले प्रतिज्ञा गरेका छन्, त्यसमा सन्देह लिनुपर्दैन ॥७१-७२॥

कार्तिक स्वामीले भन्नुभयो – त्यस विषयमा उत्सुक भएका विष्णु नारदमुनिको भनाइ सुनेर अत्यन्त खुसी हुनुभयो र नरसँग विवाहको लग्नको बारेमा छलफल गर्नुभयो ॥७३॥ विष्णु भगवान्‌ले सबै कुरा असल हुने लग्न निकालेर तुरुन्तै नारदलाई शुभ दिन बताउँदै भन्नुभयो – आजको तेस्रो दिन मङ्गलबार परेको छ, त्यो दिनको लग्न उत्तम छ, बुझ्नुहोस् ॥७४॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डको गौरीविवाहका प्रसङ्गमा नारदको परिकल्पनानामक अन्ठाउन्नौं अध्याय पूर्ण भयो।

---

१८. गुणेन सुन्दरेण च इति न.सं.पु.पाठः।
१९. मयि प्रार्थयते ध्रुवम् इति न.सं.पु.पाठः।
२०. इयं कन्या समादत्ता देवाय गरुडासने इति न.सं.पु.पाठः।

# एकोनषष्टितमोऽध्यायः

## उमाकृता शिवोपासना शिवसमागमश्च

अगस्त्य उवाच

याते च नारदे स्कन्द किमकुर्वद्धिमालयः। विष्णवे च प्रतिश्रुत्य सुतां दातुञ्च[1] पार्वतीम् ॥१॥
पार्वती सा तदा भूयः प्रेक्ष्य चेष्टां पितुर्गृहे। किङ्कृत्वा संस्थिता देवी सोमा जगद्विमोहिनी ॥२॥

स्कन्द उवाच

सा पार्वती समुद्विग्ना दुःखातुराऽभवत्पुनः। पितुर्वचः समाकर्ण्य चाऽविमर्शोदितं तदा ॥३॥
निशम्य तद्वचो गौरी मुमूर्च्छ कटुकं मुहुः। राजसर्षपपिङ्गाङ्गी नेत्राम्बुवर्षणैः पुनः ॥४॥
पपात मूर्च्छिता तीव्रं विह्वला वासवेश्मनि। दुःखानलप्रदग्धाङ्गी वातेनेव हतो द्रुमः ॥५॥
समुत्थाय शनैर्दोर्भ्यामबोधयत्सखी च ताम्। भूमौ निपतितां प्रेक्ष्य धर्मशीला निशि द्विज ॥६॥
ततः पप्रच्छ रात्रौ तां धर्मशीला सखी तदा। दुःखातुराञ्च वृत्तान्तं यतो जाता सुविह्वला[2] ॥७॥

धर्मशीलोवाच

दूयसे किमु[3] हे भद्रे कस्माद् दुःखातुराऽधुना। मैवं विह्वलतां गच्छ[4] धैर्यं धारय सुन्दरि ॥८॥
मात्रा ते गर्हिता भद्रे पित्रा वा वद मे वचः। अथवाऽऽर्ये च केनापि कुत्सिता वद मां शुभे ![5] ॥९॥
पितरौ त्वां भूषयतः बहुमानपुरस्सरम्। मान्याऽसि गौरवाऽसि त्वं सर्वत्र सर्वकर्मसु ॥१०॥
अयं सुकोमलः कायः केन खिन्नीकृतस्तव। विद्यते केन दुःखञ्च तव देवि वदस्व मे ॥११॥
गौरि ! त्वं दुःखिता कस्मात् सत्यं सत्यञ्च मे वद। भद्रोपायेन ते दुःखं मोचयिष्यामि साम्प्रतम् ॥१२॥

---

## अध्याय - ५९

### उमाद्वारा गरिएको शिवोपासना र शिवसमागम

अगस्त्य मुनिले भन्नुभयो - हे कार्तिक स्वामी ! नारद गएपछि आफ्नी छोरी पार्वती विष्णु भगवान्लाई दिनका लागि वचनबद्ध भएका हिमालयले के गरे ? फेरि घरमा बाबुले विवाहको बन्दोबस्त गर्न लागेको देखेर सम्पूर्ण जगत्लाई आफ्नो वशमा तुल्याउन सक्ने पार्वतीले के गर्नुभयो ? ॥१-२॥

कार्तिक स्वामीले भन्नुभयो - विचारै नगरीकन विष्णुलाई छोरी दिएँ भन्ने हिमालयको वचन सुनेर पार्वती फेरि के गरौँ के गरौँ ? भन्दै अत्यन्त पीडित हुनुभयो। विवाहसम्बन्धी कर्णकटु शब्द सुनेर पार्वतीका सर्स्यूँजस्ता अङ्ग पहेँला भए। बारम्बार उहाँका आँखाबाट आँसु झरेका थिए। उहाँ बारम्बार मूर्च्छा पर्नुभयो। दुःखरूपी अग्निको ज्वालाले सम्पूर्ण अङ्ग जलेकी पार्वती बतासले ढलाएको रुखजस्तै बनेर अत्यन्त मूर्च्छित हुँदै घरको मझेरीमा पछारिनुभयो। हे मुनि ! यसरी राति घरभित्र पीरले मूर्च्छित भई पछारिएकी पार्वतीलाई देखेर धर्मशीलाले उहाँलाई दुबै हातले उठाई सम्झाउँन थालिन्। हे द्विजवर्य ! रातमा त्यसरी ढलेकी र दुःखले आतुर भएकी पार्वतीलाई देखेर धर्मशीला नाम गरेकी ती सङ्गिनीले अत्यन्त मूर्च्छित हुनाको मूल कारण के हो ? किन यसरी व्याकुल भयौ ? भनेर सोधिन् ॥३-७॥

धर्मशीलाले भनिन् - हे कल्याणि ! तिमी दुःख नमान, तिमी किन यसरी दुःखले आकुल-व्याकुल भएकी हौ ? दुःखको कारण बताऊ। तिमी विह्वल नबन। हे सुन्दरी ! धैर्य धारण गर ॥८॥ हे भद्रे ! आमाले तिमीलाई गाली गर्नुभयो कि बुबाले गाली गर्नुभयो ? अथवा हे आर्ये ! अरू कसैले पो तिमीलाई गाली गऱ्यो कि ? मलाई भन। तिम्रा आमा र बुबाले तिमीलाई बडो सम्मानका साथ अलङ्कृत तुल्याएका छन्, सबै ठाउँमा सबै काममा सधैँ तिम्रो मानभाउ बढेको छ। यो अत्यन्त कलिलो तिम्रो शरीरलाई कुन तत्त्वले खिन्न पारेको छ ? कुन कारणले गर्दा तिमीलाई यो दुःख भएको छ ? हे सखी पार्वती ! मलाई बताऊ। हे गौरी ! के कारण पऱ्यो तिमीलाई र यसरी दुःखित भयौ ? मलाई साँचो भन। हितकारक कुनै उपाय सोचेर म तिम्रो दुःख हरण गर्नेछु ॥८-१२॥

---

१. दातु सुताञ्च इति न.सं.पु.पाठः।
२. यतः प्राप्ता सुविह्वलाम् इति न.सं.पु.पाठः।
३. मा मा दूयसि इति न.सं.पु.पाठः।
४. विह्वलायाञ्च मा गच्छ इति न.सं.पु.पाठः।
५. कुत्सिता ते वदस्व मे इति न.सं.पु.पाठः।

पार्वत्युवाच

मा मा माञ्च सखि त्वं तद्धर्मशीले हि पृच्छसि। दैवेन वञ्चितायाश्च वृत्तान्तं दुःखदं मम ॥१३॥
यन्मया चिन्तितं कार्यं तद्दैवेनान्यथा कृतम्। अतो मम[६] त्वभागिन्या वार्त्तां मा माञ्च पृच्छतु[७] ॥१४॥
अविमृश्याऽधुना पित्रा मात्रा सखि सहैव च। प्रतिश्रुता त्वहं दत्ता गरुडध्वजधारिणे ॥१५॥
अहन्तु चिन्तयामीशं सखि तदन्यथा यदि। तस्माद्देहपरित्यागं करिष्येऽद्य न संशयः ॥१६॥

धर्मशीलोवाच

मैवं चिन्तय हे गौरि ! भद्रोपायं करोमि ते। न जानाति पिता यत्र व्रजावस्तद्वनं महत् ॥१७॥
यश्चेच्छितस्त्वया देवस्शीघ्रं तमेव प्राप्स्यसि[८]। गच्छ गौरि मया सार्द्धं वाञ्छितं यत्र तद्वनम् ॥१८॥

स्कन्द उवाच

इत्येवं सम्मतं कृत्वा ययौ शीघ्रञ्च पार्वती। सख्या सह निशायां वै गौरीनामशिलोच्चये ॥१९॥
नीलकण्ठाद्दिशि प्राच्यां दशयोजनदूरतः। यत्र तप्तं पुरा गौर्या तस्या नाम्ना प्रतिश्रुते ॥२०॥
ब्रह्मनद्यां मुदा स्नात्वा स्वकामेन यदृच्छया। समारुरुहतुस्ते हि[९] व्योमशृङ्गशिलोच्चयम् ॥२१॥
गौर्या जप्तं हुतं वह्नौ ज्वालिते भक्तिपूर्वकम्[१०]। सख्या सार्द्धं मुनिश्रेष्ठ तपश्चकार भूरिशः ॥२२॥
भाद्रकृष्णकुहौ देवी चाऽहोरात्रमुपोष्य च। यावत्सम्यग् द्वितीयान्तं हृदा दध्यौ परेश्वरम् ॥२३॥
तदाङ्गजनितस्वेदः पपात हिमशेखरे। तस्मादुवाह च स्वच्छा चाऽऽदिगङ्गेति विश्रुता ॥२४॥
आदिगङ्गामहातीर्थे सर्वतीर्थशिरोमणौ। उवाह सापि कौशिक्या चाऽद्यापि सह सन्ततम् ॥२५॥

---

पार्वतीले भन्नुभयो – हे सखी धर्मशीले ! मसित नसोध, सोध्दै नसोध। दैवबाट वञ्चित मेरो वृत्तान्त अत्यन्त दुःखदायक छ। जुन कुरा मैले सोचेकी थिएँ, त्यसलाई दैवले उल्ट्याइदियो। यसैले म अभागिनीको विषयमा तिमी कुरै नगर, मलाई नसोध। हे सखी ! मेरी आमा मेनासँग सल्लाह नै नगरीकन भर्खरै मेरा पिता हिमालयले भगवान् विष्णुसँग मेरो विवाह गरिदिने प्रतिज्ञा गर्नुभयो भन्ने सुनें। हे सखी ! मैले त शिवजीलाई नै चिन्तन गरिराखेकी छु। त्यसमा अन्यथा भयो भने त्यसै कारणबाट म आजै शरीर त्याग गर्नेछु, यसमा सन्देह छैन ॥१३-१६॥

धर्मशीलाले भनिन् – हे गौरी ! तिमी यस्तो नचिताऊ। यस विषयमा तिम्रो हुने कुनै उपाय गर्छु। तिम्रा पितालाई पनि थाहा नभएको एउटा जङ्गल छ, मसित तिमी त्यहाँ हिंड। तिमीले जसलाई चाहेको हो, उहाँलाई नै पाउँछ्यौ, तिम्रो इच्छा पूर्ण हुन्छ ॥१७-१८॥

कार्तिक स्वामीले भन्नुभयो – यस्तो सल्लाह गरेपछि आफ्नी सङ्गिनी धर्मशीलालाई साथमा लिएर पार्वती राति नै गौरी नाम गरेको पर्वतमा तुरुन्त जानुभयो। त्यहाँ पहिले गौरीले तपस्या गर्नुभएको थियो। त्यसैले त्यो पर्वत गौरीको नामले आज पनि प्रसिद्ध छ। यो पर्वत नीलकण्ठ पर्वतबाट दश योजन पूर्वमा पर्छ। त्यसपछि प्रसन्न हुँदै ती दुईले ब्रह्म नदीमा स्नान गरे र आकाश छुने टाकुराले युक्त भएको पर्वतमा आरोहण गरे ॥१९-२१॥

हे मुनिश्रेष्ठ ! त्यहाँ पार्वतीले प्रसन्न भएर आफ्नी सखीसित बसेर जप गर्नुभयो, आगो बालेर होम गर्नुभयो र हरेक किसिमका तपस्याहरू गर्नुभयो। भाद्र महिनाको कृष्ण पक्षको औंसीका दिन पार्वतीले भगवान् शिवमा भक्तिपूर्वक लीन भएको हृदय बनाई रातभर जाग्राम बसेर द्वितीया तिथिसम्म निरन्तर परमेश्वर शङ्करको ध्यान गर्नुभयो। उहाँको अङ्गबाट पसिना निस्कियो र हिमालयको टाकुरामा खस्यो। त्यो स्वच्छ जल त्यहाँबाट बग्यो र आदिगङ्गाको नामले प्रसिद्ध भयो। सम्पूर्ण तीर्थहरूमा आदिगङ्गा तीर्थ श्रेष्ठ तीर्थ मानिन्छ। ती आदिगङ्गा नदी आज पनि निरन्तर बग्दै गएर कौशिकी नदीमा मिलेकी छिन् ॥२०-२५॥

---

६. अतस्त्वया इति न.सं.पु.पाठः।
७. पृच्छसि इति न.सं.पु.पाठः।
८. यमिच्छितं त्वया देवं तमेवाशु लभिष्यसि इति न.सं.पु.पाठः।
९. समारुहोहतुस्तौ हि इति न.सं.पु.पाठः।
१०. तत्र जजाप गौरी सा हुत्वाग्नि ज्वालयन् मुदा इति न.सं.पु.पाठः।

ततश्च हिमवान्मूर्तामाजुहाव [११] सुतां मुहुः। स्नात्वा चाशमयितुं गेहे पार्वतीं कुलभूषणाम् ॥२६॥
अनागतां समालोक्य तद्‌गृहं प्रविवेश सः। अन्वेषयन् तदावासे हिमाद्रिस्तां न दृष्टवान् ॥२७॥
ततश्चाऽन्वेषयच्छैलः सर्ववेश्मसु पार्वतीम् [१२]। पर्वतेषु दरीष्वार्य वनेषूपवनेषु च ॥२८॥
नप्रेक्ष्य हिमवान् धीर पार्वतीं तनयां [१३] स्वकाम्। समागत्य ततो गेहं मुमूर्च्छ च मुहुर्मुहुः ॥२९॥
पपात हिमवान् भूमौ वज्रेणेव हतो द्रुमः। प्रियां दुहितरं स्मृत्वा [१४] तत्स्वीकारं तथा पुनः ॥३०॥
मेना चैव मुमूर्च्छाऽऽदौ संस्मृत्य तनयाञ्च ताम्। पपाताऽऽशु च मेदिन्यां विदीर्णहृदया यथा ॥३१॥
कस्याऽन्तिके च मे पुत्री देवदानवकिन्नरैः। हृता सत्येन या दत्ता विष्णवे च मया पुरा [१५] ॥३२॥
इत्येवं चिन्तयन् गौरीं मूर्च्छितः पतितो भुवि ॥३३॥
हाहाकारो महाँस्तत्र [१६] चाऽभ्यधावत साम्प्रतम्।

जना ऊचुः

मोहं प्राप्तः किमर्थं त्वं हिमवन् शैलराट् ध्रुवम्। तपःस्थानचरो भूत्वा तव किं कृच्छ्रसाधनम् ॥३४॥
विललाप स [१७] शैलेशो लोकैर्बोधे कृतेऽपि च। यद्विद्यते च दुःखं ते वदतु हिमवन्निह ॥३५॥

हिमवानुवाच

केन दृष्टा त्वचेष्टस्य कन्येयं मे च मायया। दष्टा वा कालसर्पेण सिंहव्याघ्रेण वा हता ॥३६॥
न जाने क्व गता पुत्री केन दुष्टेन वा हृता। येन केनापि दृष्टा चेद्यत्र कुत्रापि तद्वद ॥३७॥

---

त्यसपछि हिमालय पर्वतले स्नान तथा भोजन गराउनका लागि आफ्नी कुलभूषण भएकी पार्वतीलाई घरमा बोलाए। उनलाई घरमा नआएको देखर हिमालय पार्वतीको वासस्थलमा गए। त्यहाँ उनले पार्वतीलाई खोजे तर देखेनन्। त्यसपछि पर्वतराज हिमालयले सबै भवनहरूमा, पहाडहरूमा, ओडारहरूमा, वनहरूमा र बगैंचामा उनलाई खोज्न लगाए ॥२६–२८॥

हे धीर अगस्त्य मुनि ! हिमालय पर्वतले आफ्नी छोरी पार्वतीलाई नभेटेपछि उनी फर्केर घर आए अनि बारम्बार मूर्च्छा पर्न थाले। एकातिर छोरी हराइन् भन्ने पीर, अर्कातिर विष्णु भगवान्‌लाई दिन्छु भनेकोमा प्रतिज्ञाभङ्ग, दुबैको चोटले गर्दा वज्र परेर रुख ढलेझैं हिमालय भूमिमा पछारिए। छोरीलाई सम्झिएर छाती चिरिएजस्ती भएकी मेना पनि पहिले मूर्च्छा परिन् र त्यसपछि पृथ्वीमा पछारिइन्। आज मेरी छोरीलाई देवता, दानव अथवा किन्नर कसले लग्यो ? दिन्छु भनेर पहिले भगवान् विष्णुलाई स्वीकृति दिइसकेको छु, अब के दिऊँ ? यस्तो विलाप गर्दै हिमालय फेरि भूमिमा पछारिए। त्यसबेला सारा प्रजाहरू हाय–हाय भनेर दौडिँदै तुरुन्त त्यहाँ आए ॥३२–३३½॥

प्रजाहरूले भने – हे पर्वतराज हिमालय ! तपाईं किन यसरी मूर्च्छा पर्नुहुन्छ ? तपाईं तपस्याको स्थल नै हुनुहुन्छ, कुनै कुरा सिद्ध गर्न तपाईंलाई कुनै कठिनाइ पर्दैन। तपाईंको मनमा जे पीडा परेको छ, त्यो बताउनुहोस् भनेर जनताहरूले पर्वतराज हिमालयलाई धेरै सम्झाए। तैपनि उनले विलाप गर्न छोडेनन् ॥३४–३५॥

हिमालयले भने – मेरी छोरीलाई कसैले देखेका छौ कि ? कसैले छलेको त छैन ? कालो सर्पले पो टोक्यो कि ? अथवा सिंह वा बाघले माऱ्यो कि ? मेरो छोरी कहाँ गइन् ? कुन दुष्टले हऱ्यो, म यो केही पनि जान्दिनँ। यस विषयमा तपाईंहरूमध्ये कसैलाई थाहा छ भने त्यो वृत्तान्त मलाई बताइदिनुहोस् ॥३६–३७॥

---

११. हिमवान्मूर्त्तिः इति न.सं.पु.पाठः। १२. पार्वतः इति न.सं.पु.पाठः। १३. दुहिताम् इति न.सं.पु.पाठः।
१४. प्रियसुताञ्च संस्मृत्य इति न.सं.पु.पाठः। १५. हृता सत्यकृता पूर्वं किं दास्ये गरुडध्वजे इति न.सं.पु.पाठः।
१६. हा हा कृतास्ततो लोका इति न.सं.पु.पाठः। १७ बहून् विलप्य इति न.सं.पु.पाठः।

एका पुत्री सुरूपा मे सर्वोच्चगुणसंश्रया। क्व गता नु न जानेऽहं कन्येयं कुलभूषणा ॥३८॥
हा पुत्रि क्व गताऽसि त्वं परित्यज्य स्वमातरम्। हता केनाऽस्यरण्ये त्वं हा पुत्रि कुलभूषणे ॥३९॥

स्कन्द उवाच

इत्येवं हि विलपति हिमाचले[१८] घटोद्भव। मेनायां दुःखितायाञ्च स्वजनैः सान्त्वितः स्थितः ॥४०॥
भूयश्च नारदस्तत्र समाययौ मुदाऽन्वितः। वैवाहिकदिनं तस्या आदाय विष्णुसम्मतम् ॥४१॥
ततश्च हिमवान् दृष्ट्वा दुःखदग्धश्च नारदम्। बहु[१९] विलप्य तस्याऽग्रे ननाम च मुहुर्मुहुः ॥४२॥

हिमवानुवाच

यन्मया चिन्तितं कार्यमभाग्येनैव नारद। अन्यथा च कृतं तद्वै दैवेनाऽत्यविवेकिना ॥४३॥
प्रतिश्रुता मया नूनं पुत्री नारद विष्णवे। हृता केन च मे बाला तां न जानामि पार्वतीम् ॥४४॥
वाचा दत्ता हि सा पूर्वं मया नारद विष्णवे। अदानात्[२०] किल्विषं मह्यं कुत्सिष्यन्ति जना भृशम् ॥४५॥
मह्यं लोका वदिष्यन्ति धिग्धिगिति न संशयः। प्रतिश्रुत्य न दत्ता सा त्रिषु लोकेषु नारद ॥४६॥
उपालम्भो भवेदद्य दैवयोगान्ममैव च। कुलस्यैव तथाऽद्यैव सर्वलोकैश्च कुत्सितः ॥४७॥
किं करोमि क्व गच्छामि ह्युपक्रोशमलीमसैः। संयुक्तापद्यतोऽहञ्च वाचा दत्तमदत्तवान् ॥४८॥
दैवयोगेन दातुं तां तस्मै चाऽशक्तवानहम्। प्रतियातु भवाँस्तत्र विष्णवे चैतदुच्यताम् ॥४९॥
या दत्ता च मया तुभ्यं दैवेनैव हृताऽधुना। अशक्तोऽस्मि च तां दातुं क्षमस्वाऽऽगासि मे हरे ॥५०॥

---

एक त मेरी एउटी मात्र छोरी त्यसमा पनि अत्यन्त राम्री, सर्वगुणसम्पन्न मेरो कुलको गहनास्वरूपकी ती छोरी कहाँ गइहोलिन्, मलाई थाहा भएन। हे पुत्री ! हे कुलकी गहना ! तिमी आफ्नी आमालाई छोडेर कहाँ गयौ ? जङ्गलमा कसैले माऱ्यो कि क्या हो ! ॥३८-३९॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! यसरी हिमालयले विलाप गरे। मेनकाले ज्यादै दुःख मानिन्। दुबैलाई आफ्ना बन्धुबान्धवले सम्झाए। त्यसैबेला प्रसन्न हुँदै नारदमुनि विष्णुले दिएको विवाहको दिनको खबर दिन त्यहाँ आइपुगे। त्यसपछि अत्यन्त दुःखले पीडित हिमालयले नारदमुनिलाई देखेर अनेकौं विलाप गर्दै उनलाई बारम्बार नमस्कार गरे ॥४०-४२॥

हिमालयले भने – हे नारदजी ! मैले जुन कुरा सोचेको थिएँ, निर्विवेकी दैवले त्यसलाई विपरीत बनायो। हे नारदजी ! मैले मेरी छोरी विष्णुलाई दिन्छु भनेर स्वीकृति दिएको थिएँ, ती बाला पार्वतीलाई कसले हऱ्यो, मलाई थाहा छैन। हे नारदजी ! मैले विष्णुलाई पहिले नै वाग्दान गरिसकेको छु। उहाँलाई नदिँदा मलाई ठूलो पाप लाग्छ, दुनियाँले मेरो निन्दा गर्नेछन्। मलाई तीनै लोकमा 'धिक्कार छ यसलाई, धिक्कार छ यसलाई' भन्नेछन्, यसमा शङ्का छैन। किनभने मैले 'दिन्छु' भनेर पनि छोरी दिन सकिनँ। दैवले गर्दा आज चारैतिरबाट मेरो निन्दा हुनेछ, कुलकै निन्दा हुनेछ र दुनियाँले मलाई धिक्कार्नेछन्। यो मलिनता लिएर म के गरूँ ? कहाँ जाऊँ ? बोलीले दिएर पनि मैले कन्या दिन सकिनँ, म ठूलो आपत्मा परेको छु। भाग्यले गर्दा पार्वती विष्णुलाई मैले दिन सकिनँ। हजुर फर्किएर जानुहोस् र विष्णुलाई यो समाचार भनिदिनुहोस्। जो मैले हजुरलाई दिएँ, त्यसलाई अहिले दैवले हरिदियो। म छोरी दिन सक्ने भइनँ। हे हरि ! मेरो अपराध क्षमा गर्नुहोस् ॥४३-५०॥

---

१८. विलापे च हिमवति इति न.सं.पु.पाठः। १९. बहून् इति न.सं.पु.पाठः।
२०. अदत्तात् इति न.सं.पु.पाठः।

स्कन्द उवाच

समाकर्ण्य ततो धीर हिमवतोदितं वचः । नारदोऽपि तदा तूष्णीमासीत्सुविह्वलो भृशम् ॥५१॥
आययौ यत्र विष्णुः स मुनिर्भग्नमनोरथः । न किञ्चिदवदत्तस्मै मूढात्मा त्रपया तदा ॥५२॥
अन्तःस्थोऽसौ च सर्वेषां वृत्तान्तज्ञः सदा हरिः । नारदं धीर तद्वार्त्तां न किञ्चिदपि पृष्टवान् ॥५३॥
गौरी सख्या समं शैलादवततार सा पुनः । अहोरात्रोषिता कूटे व्रतं कर्त्तुमधः क्षितौ ॥५४॥
कामदायाञ्च रम्यायां शिवाराधनतत्परा । सस्नौ च पार्वती सख्या ब्रह्मनद्यां समं तदा ॥५५॥
भाद्रशुक्लतृतीयायां हस्तनक्षत्रसंयुजि[२१] । धर्मञ्चकार सा देवी निरशना दिवानिशम्[२२] ॥५६॥
निर्माय बालुकं लिङ्गं सम्पूज्य च समर्हणैः । चक्रे जागरणं सा तु[२३] भक्तिपूर्वं तया सह ॥५७॥
तस्यां रात्रौ महादेवो लिङ्गाद् व्यक्तो बभूव हि । त्रिनेत्रो द्विभुजः शान्तस्त्रिशूलं डमरुं दधत् ॥५८॥
ततो भूयश्च पार्वत्यै वरदानाय साम्प्रतम् । व्याचष्टे सुस्मितो धीरो मनोवाञ्छाकरो हरः ॥५९॥

ईश्वर उवाच

अहो चित्रं महल्लोके समुद्भूतं कदापि न । ईदृशी कोमला बाला तपश्चक्रे यतो दृढम् ॥६०॥
द्वादशाब्दञ्च संव्याप्य सख्या सह तिथौ तिथौ । धूम्रपानं निराहारं तपस्तेपे तथा भृशम् ॥६१॥
अदेयं नास्ति चैतस्यै तपस्विन्यै यदीप्सितम् । अद्यैव च प्रदातव्यो वरो लोकेषु दुर्लभः[२४] ॥६२॥

---

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! त्यसपछि हिमालयले भनेको वचन सुनेर नारद पनि अत्यन्त विह्वल हुनुभयो र चुपचाप लाग्नुभयो। मनले चिताएको कुरा नपुग्दा दिक्दार भएका नारदमुनि भगवान् विष्णु भएको ठाउँमा जानुभयो र लाजले गर्दा उहाँलाई केही भन्न सक्नुभएन ॥५१-५२॥

हे अगस्त्य मुनि ! विष्णु भगवान् अन्तर्यामी हुनुहुन्थ्यो, उहाँलाई सबै वृत्तान्त थाहा थियो । त्यसैले गर्दा उहाँले त्यस विषयमा कुनै कुरा सोध्नुभएन । उता पार्वती फेरि एक अहोरात्र पर्वतको टाकुरामा बसेर व्रत गर्नका लागि सखीहरूका साथ तलको भूभागमा ओर्लनुभयो । त्यसपछि शिवजीको तपस्या गर्न उद्यत भएकी पार्वतीले सङ्गिनीहरूसँग मिलेर मनको इच्छा पूर्ण गरिदिने सुन्दर ब्रह्मनदीमा स्नान गर्नुभयो। हस्ता नक्षत्रले युक्त भएको भाद्र शुक्ल तृतीयाका दिन केही पनि नखाई एक अहोरात्र व्रत गर्नुभयो। पार्वतीले आफ्नी सखीलाई साथमा लिएर बालुवाको शिवलिङ्ग बनाउनुभयो, विभिन्न पूजासामग्रीहरूले भक्तिपूर्वक पूजा गर्नुभयो र रातभर जाग्राम बस्नुभयो ॥५२-५७॥

त्यसै दिनको राति तीन आँखा, दुई हात र शान्तस्वरूप भएका त्रिशूल तथा डमरुधारी महादेव त्यसै लिङ्गबाट आविर्भाव हुनुभयो। त्यसपछि मनको इच्छा पूर्ण गर्न सक्ने महादेवले मुसुक्क हाँसेर पार्वतीलाई वर दिनका निमित्त भन्न थाल्नुभयो ॥५८-५९॥

ईश्वरले भन्नुभयो – बडो आश्चर्य भयो, यस्ती कलिली कन्याले यस्तो कठोर तपस्या गरेको घटना तीनै लोकमा आजसम्म देखिएको थिएन । सुरुदेखि नै सङ्गिनीलाई साथ लिई तिथि-तिथिमा खाली धुँवा मात्र पिएर निराहार भई तनमनका साथ पार्वतीले बाह्र वर्षसम्म खूब तपस्या गरिन्। यी तपस्विनीलाई चाहेको कुरा नदिने भन्ने वस्तु नै हुँदैन। संसारमा जो पायो, त्यसले पाउन नसक्ने वर मैले आज यिनलाई दिनैपर्छ ॥६०-६२॥

---

२१. संयुते इति न.सं.पु.पाठः ।
२२. अहोरात्रं निराशना इति न.सं.पु.पाठः ।
२३. जागरणञ्च सञ्चक्रे इति न.सं.पु.पाठः ।
२४ अद्यैव च प्रदातव्यं वरं लोकेषु दुर्लभम् इति न.सं.पु.पाठः ।

शिव उवाच

वरं वरय कल्याणि यत्त्वया वाञ्छितो हृदि। दास्येऽहं तद्वरं तुभ्यं सर्वलोकसुदुर्लभम् ॥६३॥
फलितस्ते तपोवृक्षो भूत्वा कल्पतरुर्भृशम्। गृह्यतां तत्फलान्यद्य वाञ्छितानि च यत्त्वया ॥६४॥
प्रसन्नोऽस्मि च ते भक्त्या सन्तुष्टस्तपसा भृशम्। सुप्राणिनामगम्योऽहं त्रैलोक्यानां हृदा ह्यपि ॥६५॥

पार्वत्युवाच

शिवाय शिवरूपाय मङ्गलाय च शूलिने। सर्वदाय च देवाय शङ्करेश नमोऽस्तु ते ॥६६॥
संसारवृत्तिहर्त्रे वै सवार्थदाय शम्भवे। तेजोरूपाय रुद्राय सर्वरूपाय वै नमः ॥६७॥
यदि मयि[२५] प्रसन्नोऽसि सर्वलोकेश्वरेश्वर। दीयताञ्च वरो भव्यो मत्स्वान्तेन य ईप्सितः[२६] ॥६८॥
भर्त्ता भव ममैव त्वं सर्वभूतदयानिधे। अद्यप्रभृति चाऽद्येश प्रेयसीं कुरु मां ध्रुवम् ॥६९॥

शर्व उवाच

तथाऽस्तु ते महादेवि यत्त्वयोक्तञ्च मां प्रति। प्रेयसी मे सदा त्वञ्च भविष्यसि वरानने ॥७०॥
यतस्तुङ्गतपोधर्मान्मां वृणोषि वरानने। अद्याऽऽदि तव दासोऽहं भवामि खलु सर्वदा ॥७१॥
गच्छ देवि मया सार्द्धं कैलाशञ्च नगोत्तमम्। पाणिं निपीड्य[२७] तत्रैव तिष्ठावः सुसुखं मुदा ॥७२॥

उमोवाच

नैवं वक्तव्यमित्थञ्च त्वया नाथ कदापि न। अलौकिकञ्च तत् कर्म प्रभो लोकविडम्बनम् ॥७३॥
भवता नाथ वक्तव्यं विभो मे पितुरग्रतः। स मां दास्यति तुभ्यं स्यात्ततः कर्म तु लौकिकम् ॥७४॥

---

शिवजीले भन्नुभयो – हे कल्याणी जे तिमी चाहन्छ्यौ, त्यही वर माग। सबै प्राणीहरूले प्राप्त गर्न नसक्ने वर म तिमीलाई दिन्छु। तिम्रो तपस्यारूपी वृक्ष अथवा कल्पतरु फल्यो। तिमी आफूलाई इच्छा लागेको फल ग्रहण गर। तिम्रो भक्तिबाट म प्रसन्न भएँ। तिम्रो तपस्याबाट म अत्यन्त सन्तुष्ट छु। मलाई तीनै लोकमा प्राणीले हृदयले मात्र फेला पार्न सक्दैनन्, तिमीले फेला पाऱ्यौ ॥६३-६५॥

पार्वतीले भन्नुभयो – हे ईश्वर ! शिवरूप, मङ्गलस्वरूप, त्रिशूलधारी, सम्पूर्ण कुरा दिन सक्ने हे शङ्कर ! हजुरलाई नमस्कार छ। जन्म, मृत्यु आदिलाई हरण गर्ने, सम्पूर्ण कामना पूर्ण गर्ने, सम्पूर्ण प्राणीहरूको स्वरूप भएका र तेजोरूप रुद्र नाम गरेका शम्भुलाई नमस्कार छ। हे महेश्वर ! यदि हजुर मदेखि प्रसन्न हुनुहुन्छ भने मैले मेरो हृदयमा जे चिताएकी छु, त्यही वर दिनुहोस्। सम्पूर्ण प्राणीका दयासागर हे शम्भु ! हजुर आजदेखि मेरो पति हुनुहोस्। हे ईश्वर ! मलाई पत्नी तुल्याउनुहोस् ॥६६-६९॥

शिवजीले भन्नुभयो – तिमीले जे कुरा भन्यौ, त्यो कुरा हुन्छ। हे पार्वती ! अब तिमी सदाका लागि मेरी पत्नी हुन्छ्यौ। हे सुन्दरी ! तिमीले कठोर तपस्यारूपी धर्मले मलाई वरण गरेकी हुँदा आजदेखि सदाका लागि म तिम्रो दास हुन्छु। हे देवी ! अब मसँगै कैलास पर्वतमा हिंड, विवाह गरेर प्रसन्न भएर आनन्दसित त्यहीँ बसौँ ॥७०-७२॥

पार्वतीले भन्नुभयो – हे नाथ ! हजुरले यस्तो कुरा गर्नुहुँदैन किनभने समाजमा नमिल्ने काम गर्दा दुनियाले गिज्याउने बाटो हुन्छ। हे प्रभु ! हे नाथ ! हजुरले मेरा बुबासँग गएर यो कुरा भन्नुपर्छ, उहाँले अवश्य पनि आफ्नी छोरीलाई (मलाई) हजुरको हातमा सुम्पनुहुनेछ, त्यसपछि गरेको कर्म सर्वसम्मत हुनेछ ॥७१-७४॥

---

२५. मह्यम् इति न.सं.पु.पाठः। २६. दीयताञ्च वरं भव्यं मत्स्वान्तेन यदीप्सितम् इति न.सं.पु.पाठः।
२७. पीड्य च इति न.सं.पु.पाठः।

स्कन्द उवाच

समाकर्ण्य वचस्तथ्यमुमादेव्या महेश्वरः। स्वीकारं कृतवान् धीर तथास्त्विवति सुहर्षितः ॥७५॥
ब्रह्मणा हि पुरा धीमन् संसृष्टा च नदी वरा। हिमाद्रिणा समं तस्माद् ब्रह्मनदीति विश्रुता ॥७६॥
उमास्नानाद्विशेषेण पवित्राऽभूच्च सा नदी ॥७७॥
तस्यां दत्तं हुतं जप्तं तत्सर्वं चाऽक्षयं भवेत्। तस्याञ्च स्नानमात्रेण ब्रह्मलोके महीयते ॥७८॥
सर्वपापविनिर्मुक्तो ब्रह्मत्वञ्च ततो भवेत्। आदिगङ्गा महापुण्या गौरीस्वेदोद्भवा परा ॥७९॥
तयोः सुसङ्गमे तीर्थमुमातीर्थमुदाहृतम्। शतगङ्गासमं तीर्थं सर्वेभ्यः[२८] काङ्क्षितप्रदम् ॥८०॥
कुलकोटिं समुद्धृत्य जलं स्पृष्ट्वा परं व्रजेत्। तस्मिन् स्नात्त्वा च गौर्यद्रिं समारोहति यो नरः ॥८१॥
उमां स्मरन् धिया वाचा तस्य पुण्यफलं शृणु। वाजपेयाश्वमेधानां फलं प्राप्नोति तत्क्षणात् ॥८२॥
उमातपोगिरेर्भक्त्या चाऽऽरोहणात् पदे पदे। सुरासुरदुर्लभेन[२९] सिंहयानेन गच्छति ॥८३॥
स मुदा तमुमालोकं पुनर्जन्म विहाय वै। जप्त्वा चेत्तन्मनुं तत्र मोक्षं प्राप्नोति दुर्लभम् ॥८४॥
अन्यक्षेत्रे कृतानाञ्च योगिनां चातिदुर्लभम् ॥८५॥

अन्तर्हितस्तत्र शिवोऽपि शीघ्रं गौरी च सख्या सह वै निशायाम्।
चक्रे विनिद्रा गिरिशस्य भक्ति[३०] प्रापूजयत्तं[३१] विधिवन्मुदा सा ॥८६॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे उमाव्रते शर्वसङ्गमनं नामोनषष्टितमोऽध्यायः ॥५९॥

---

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! पार्वतीले भनेको उपयुक्त कुरा सुनेर महादेव अत्यन्त खुसी हुनुभयो र तथास्तु भनी स्वीकार गर्नुभयो। हे अगस्त्य मुनि ! ती श्रेष्ठ नदीलाई हिमालय र ब्रह्माजी मिलेर सृष्टि गरेको हुँदा तिनको नाम ब्रह्मनदी भन्ने रह्यो। विशेष गरी पार्वतीले स्नान गरेको हुँदा ती नदी अझ पवित्र भइन्। त्यस नदीमा दिएको दान, गरिएको हवन तथा जप सबै अक्षय्य हुन्छ। ती नदीमा स्नान गर्नाले मात्रै पनि स्नान गर्ने मानिसको ब्रह्मलोकमा सम्मान हुन्छ। सम्पूर्ण पापबाट मुक्त भएर उसले ब्रह्मत्वलाई प्राप्त गर्छ ॥७५–७८½॥

पार्वतीको पसिनाबाट पैदा भएकी आदिगङ्गा नाम गरेकी अर्की गङ्गा छन्। ती दुईको सङ्गमतीर्थलाई उमातीर्थ भनिएको छ। जुन तीर्थले सय गङ्गामा स्नान गर्दा प्राप्त हुने मोक्ष दिन्छ, इच्छा लागेको फल प्राप्त हुन्छ र जुन तीर्थको जल छुँदा मात्रै पनि करोडौँ कुलको उद्धार गरेर स्वर्गमा पुगिन्छ। त्यस तीर्थमा स्नान गरेर जुन मानिस पार्वतीलाई हृदय तथा वचनले सम्झदै गौरी पर्वतमा आरोहण गर्छ, त्यसको पुण्यफल सुन्नुहोस् – जसले भक्तिपूर्वक पार्वतीले तपस्या गरेको पर्वतमा आरोहण गर्छ त्यस व्यक्तिले पाइलैपिच्छे वाजपेय र अश्वमेध यज्ञ गरेको फल तुरुन्तै प्राप्त गर्छ। निश्चय नै त्यो व्यक्ति जन्ममरणरूपी बाधाबाट मुक्त भएर देवता र दैत्यहरूका निमित्त पनि दुर्लभ पार्वतीको लोकमा सिंहको वाहनमा चढेर जान पाउँछ। अरू क्षेत्रमा बसेर तपस्या गर्ने योगीहरूले प्राप्त गर्न नसक्ने मोक्ष नामक वस्तु त्यहाँ बसेर पार्वतीको मन्त्र जप्नाले मात्रै पनि प्राप्त गर्न सकिन्छ ॥७९–८५॥

पार्वतीलाई वर दिएपछि भगवान् शिवजी तुरुन्तै अन्तर्धान हुनुभयो। पार्वती पनि आफ्नी सङ्गिनीसँगै प्रसन्न हुँदै भक्तिपूर्वक शिवजीको पूजा गरेर रातभर जाग्राम बस्नुभयो ॥८६॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डको गौरीव्रतको प्रसङ्गमा पार्वतीको तपस्या र शिवगौरीसङ्गमनामक उनान्साठियौं अध्याय पूर्ण भयो।

---

२८. निर्वाणम् इति न.सं.पु.पाठः।
२९. दुर्लभेन सुरैर्दैत्यः इति न.सं.पु.पाठः।
३०. गिरिशं स्वभक्त्या इति न.सं.पु.पाठः।
३१. संपूज्यत्तम् इति न.सं.पु.पाठः।

# षष्टितमोऽध्यायः

## शिवपार्वतीविवाहः

### स्कन्द उवाच

प्रणीतायां निशायां सा स्नात्वोषसि ददौ मुदा। उमा श्रीभास्करायाऽर्घ्यं भक्तेशं पूज्यपूजनैः ॥१॥
ततो वनसमूद्भूतफलमूलानि ते तदा। आनीय पारणं नद्याश्चक्रतुः पपतुर्जलम् ॥२॥
ब्रह्मनद्यास्तटे भद्रे सुषुपतुस्तदह्नि ते। पार्वती धर्मशीला वै सर्वजन्तुविवर्जिते ॥३॥
तद्दिने हिमवान् गेहाद्विनिर्गत्य सुदुःखितः। सुतामन्वेषयन् तत्र सम्प्राप्तवान् हि तद्वनम् ॥४॥
ततो हिमालयश्चार्त्तो नदीतीरे च निर्जने। तत्राऽऽलोक्य चतुर्दिक्षु वृक्षस्याऽधो नदीतटे ॥५॥
ददर्श द्वितीये यामे सुप्तं कन्याद्वयं स्थितम्। दृष्ट्वा सुखं प्रसुप्तं वै विविक्तं कन्यकाद्वयम् ॥६॥
अधावल्लघु तद्देशं प्रसुप्तकन्यकाद्वयम्। हा पुत्रीति च सङ्क्रन्दन् शोकेन कम्पयन् तनुम्[1] ॥७॥
तत्क्रन्दितं समाकर्ण्य सुप्तोत्थिते च साम्प्रतम्। ते युगपन्मुने तातमपश्यतां[2] तदन्तिके ॥८॥
स्वाङ्कमानीय चोत्थाय चाऽरोदीत्स मुहुर्मुहुः। आत्मजाया मुखाब्जञ्च प्रेक्ष्य व्याचष्ट हेमभृत् ॥९॥

### हिमवानुवाच

सिंहव्याघ्रगजैर्युक्तं नानाजन्तुभयङ्करम्। एवं वनं महाभीष्मं किमर्थमत्र चाऽगतम् ॥१०॥
कस्माच्च दूयते पुत्रि कुलभूषणया त्वया। केनापि कुत्सितं तुभ्यं वद यन्मे तथा द्रुतम् ॥११॥
त्वया विरहितं धाम सर्वसम्पद्युतं ह्यपि। अरण्यमिव मे पुत्रि प्रकृतं कुरु साम्प्रतम् ॥१२॥
बहुदुःखातुरा माता पुत्रि ते शोककर्शिता। कुररीव च सा नित्यं सम्बोधयाऽऽशु मातरम् ॥१३॥

---

## अध्याय - ६०

### शिव र पार्वतीको विवाह

कार्तिक स्वामीले भन्नुभयो – रात समाप्त भएर उज्यालो भएपछि पार्वतीले आनन्दसित स्नान गरेर भक्तहरूका स्वामी महादेवलाई पूजासामग्रीद्वारा पूजा गरी सूर्यलाई अर्घ्य दिनुभयो। त्यसपछि सखीसहित पार्वतीले वनमा पैदा भएका फलफूलहरू ल्याई पारण गर्नुभयो र नदीको जल पिउनुभयो। त्यस दिन ती दुई पार्वती र धर्मशीला कुनै पनि प्राणी नभएको ब्रह्मनदीको कल्याणदायक तटमा सुत्नुभयो ॥१-३॥

त्यसै दिन अत्यन्त दुःखित हिमालय घरबाट निस्किएर छोरीलाई खोज्दै त्यसै जङ्गलमा आइपुगे। हिमालय मानिस नभएको त्यस नदीको तीरमा आत्तिँदै आए र त्यहाँ उनले चारैतिर हेरे। नदीको तीरमा रुखमुनि रातको दोस्रो प्रहरको समयमा सुतेका दुईवटी कन्याहरूलाई देखे र उनले यिनीहरू को होलान् भन्ने विचार गरे ॥४-६॥

त्यस्तो विकट ठाउँमा सुतेका दुईवटी कन्यालाई देखेर हे छोरी ! भनेर रुँदै कराउँदै हिमालय दौडिँदै त्यस ठाउँमा गए। त्यसबेला उनको शरीर शोकले काँपेको थियो। हे अगस्त्य मुनि ! बाबुको क्रन्दनलाई सुनेर सखी र पार्वती दुवै एकैचोटि जागा हुनुभयो र उठेर आफ्नो बुबालाई ढोगिदिनुभयो। हिमालय पनि छोरी पार्वतीलाई काखमा राखेर धेरै वेरसम्म रोए र छोरीको मुख हेरेर भन्न थाले ॥७-९॥

हिमालयले भने – हे छोरी ! बाघ, भालु, हात्ती आदि विभिन्न थरी डरलाग्दा जन्तुहरूले युक्त भयङ्कर यस जङ्गलमा तिमी किन आयौ ?। हे छोरी ! तिमी मेरी कुलकी गहना हौ, तिमीलाई के पीर पऱ्यो ? कसैले केही भन्यो कि ? मलाई भन। हे छोरी ! तिमी नहुँदा मेरो सम्पूर्ण सम्पत्तिले युक्त भएको घर पनि जङ्गलजस्तै भएको छ। अब हिँड, आफ्नो घरलाई सुशोभित तुल्याऊ। हे छोरी ! तिम्री आमा तिम्रो शोकले ज्यादै दुःखी र दुब्ली भएकी छिन्। न्याउलीचरीझैं सधैं रोइरहन्छिन्, गएर सम्झाऊ ॥१०-१३॥

---

१. वेपथुस्तनुः इति न.सं.पु.पाठः। २. तातमद्दर्शताम् इति न.सं.पु.पाठः।

स्कन्द उवाच

एवमुक्तं वचः श्रुत्वा पितुर्हिमवतस्तदा। उमादेवी समं सख्या चाऽजगाम गृहं[३] स्वकम् ॥१४॥
हिमवानपि तां पुत्रीं ज्ञात्वा सक्तां शिवे हृदा। शिवभक्तां पुरोधाय चाऽऽययौ स्वगृहं मुदा ॥१५॥
दुःखदग्धा ततो मेना ददर्श व्रतकर्शिनीम्। ततो वनात् समायातां स्वसुतां मुनिसत्तम ॥१६॥
परिरभ्य सुतां गाढं दोर्भ्यां मेना तदा द्रुतम्। कुररीव सुतां दृष्ट्वा करुणं समरूरुदत् ॥१७॥
ततोऽवोचद्वचो मेना निःश्वसन्ती मुहुर्मुहुः। वाचा गद्गदया पुत्रीं[३क] पुत्रीस्नेहवती मुने ॥१८॥

मेनोवाच

हाऽऽर्ये पुत्रि परित्यज्य मां तातं क्व गतासि च। रत्नालयं स्वकं गोत्रं महार्हणविभूषणम् ॥१९॥
सभृत्यानाञ्च नः पुत्रि जीवरूपा त्वमेव च। शवस्य च गतिं लब्ध्वा चैवमेव वयं स्थिताः ॥२०॥
नः कुलभूषणाऽसि त्वं सर्वप्रियंवदे शुभे। कुतो दुःखं समायातं ते पुत्रि वद मेऽधुना ॥२१॥

पार्वत्युवाच

यन्मया चिन्तितं मातस्तच्च तातेन साम्प्रतम्। अविमृश्य त्वया सार्धं हे मातरन्यथाकृतम्[४] ॥२२॥
मया सुचिन्तितं रुद्रचरणाब्जनिषेवणम्[५]। अङ्गीकृता च तातेन मां सत्वरञ्च विष्णवे ॥२३॥
अतो मया तपस्तप्तं श्रीसदाशिवप्राप्तये[६]। तत्रेश्वरेण मे मातः फलं दत्तं सुधर्मतः ॥२४॥
अतश्चैवमयं कायः तच्चरणारविन्दयोः। प्रसेवनाय संयोज्यो नाऽन्यस्य च कदाचन[७] ॥२५॥

---

कार्तिक स्वामीले भन्नुभयो - आफ्नो बाबु हिमालयको यो कुरा सुनेर सखीसँगै पार्वती आफ्नो घर जानुभयो। हिमालयले पनि छोरी शिवजीप्रति अनुरक्त भएको र शिवजीको भक्ति गरेर बसेको कुरा थाहा पाए। शिवको भक्त बनेकी पार्वतीलाई अघि लगाएर आनन्दपूर्वक आफ्ना घरमा गए। हे अगस्त्य मुनि ! छोरी हराएको दुःखले डढेकी मेनाले तपस्याद्वारा दुब्ली भएर वनबाट आउँदै गरेकी छोरीलाई देखिन्। देख्नासाथ छोरीलाई दुई हातले अँगालो मारेर न्याउलीचरीले जस्तै गरी मेना अत्यन्त डाँको छोडेर रोइन्। केही समयपछि लामो श्वास फेरेर छोरीको माया गर्दै गद्गद स्वरले मेनाले भन्न लागिन् ॥१४-१८॥

मेनाले भनिन् - हे छोरी ! म, तिम्रा बुबा, रत्नमय घर, आफ्ना दाजुभाइ र बहुमूल्य मणिले बनेका गहनाहरूलाई छोडेर तिमी कहाँ गएकी थियौ ? हे पुत्री ! नोकरचाकर र हाम्रा निमित्त तिमी प्राण नै थियौ, तिमी गइदिँदा हामी मुर्दा भएर बसेका छौं। हे छोरी ! तिमी हाम्रो कुलकी भूषण हौ। हे प्रियंवदे ! हे कल्याणी ! तिमीलाई कताबाट दुःख आइपर्‍यो ? मलाई भन ॥१९-२१॥

पार्वतीले भन्नुभयो - हे आमा ! जुन कुरा मैले सोचेकी थिएँ त्यस विषयमा हजुरसित परामर्श नै नगरी मलाई बुबाले विष्णुलाई सुम्पनुभयो। मैले त शिवजीको पाउको सेवा गर्ने विचार गरेकी थिएँ तर बुबाले हत्त न पत्त विष्णुलाई दिने निर्णय गर्नुभयो। त्यसैले दुःखी बनेर म शिवजीको तपस्या गर्न गएकी थिएँ। हे आमा ! तपस्याको प्रभावले गर्दा भगवान् शिवजीले दर्शन र वर दिनुभयो। अब यो शरीर शिवजीको चरणकमलको सेवामा समर्पित भइसक्यो, मैले यसलाई उहाँकै सेवामा लगाउनेछु। हे आमा ! कदापि अन्यथा हुँदैन ॥२२-२५॥

---

३. अजग्मतुर्गृहम् इति न.सं.पु.पाठः।
३क. तस्यै, इति न.सं.पु.पाठः।
४. अविमर्ष्य त्वया सार्द्धं विससर्ज तदेश्वरम् इति न.सं.पु.पाठः।
५. रुद्रं तच्चरणप्रसेवनम् इति न.सं.पु.पाठः।
६. अतो दुःखातुराऽहञ्च तपस्तप्तुं तमैश्वरम् इति न.सं.पु.पाठः।
७. कार्यस्यान्मात कदापि नान्यतः इति न.सं.पु.पाठः।

स्कन्द उवाच

तद्वचनं सा समाकर्ण्य तपस्विन्यास्तदा मुने। सुखं लब्धवती मेना माधुर्यप्रियभाषणैः ॥२६॥
दावक्लेशितगुल्मानि[८] सुधासारैरिवाऽऽशु च। तद्वचःशीतला मेना तापं जह्रे व्यथोद्भवम् ॥२७॥
तथाऽस्तु ते सुते भद्रे यस्ते कामो हृदि स्थितः[९]। एवं सम्बोध्य मेना तदजहाद्[१०] दुःखमाशु वै ॥२८॥

अगस्त्य उवाच

स्वशृङ्गेऽपि स्थितां गौरीं तपस्विनीं तदा विभो। हिमवाँश्च कथं स्कन्द ! ज्ञातवान् न सुतां स्वयम् ॥२९॥
अज्ञानेनाश्रितः शैलः प्राकृतश्च तथा जनः। तपस्थानं गरीयश्चप्राप्तवान् वद मे कथम्[१०क] ॥३०॥

स्कन्द उवाच

यया विमोहिता लोका जगच्च सचराचरम्। पुरा विमोहितो विष्णुस्तन्माहात्म्यञ्च ब्रूमः किम् ॥३१॥
यन्मायामोहितो रुद्रः पितामहस्तथाविधः। सुरासुरा मुने सर्वे किञ्च स स्थावरात्मकः ॥३२॥
सृष्टिस्थितिविनाशाँश्च यदृच्छया करोति या। तन्मायामोहितो यस्तच्चरितं वेत्ति किञ्च सः ॥३३॥
यस्या विभूतयो देवाः प्राणिनः सचराचराः। त्रैलोक्यवन्दनीयायाश्चरित्रं वेत्ति को वद ॥३४॥
जायन्ते प्राणिनो यस्यां लीयन्ते च यथा पुनः। लभन्ते च सुखं दुःखं तस्यास्तत्त्वं तु वेत्ति कः[११] ॥३५॥
संसारस्थितये गौरी तपस्तप्तवती ह्यभूत्। अवृणोत् सा पुनः[१२] शम्भुं सर्वलोकहिताय च ॥३६॥

---

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! त्यसबेला तपस्विनी छोरीको मीठो कुरा सुनेर मेनाले अत्यन्त सुखको अनुभव गरिन् ।डढेलो लागेका वृक्षहरूलाई जसरी अमृतमय वर्षाले शीतल तुल्याउँछ, त्यसरी नै पार्वतीको शीतल वचनले मेनाको हृदयको तापलाई हरण गर्‍यो। हे छोरी ! जुन कामना तिम्रो हृदयमा छ, त्यो कुरा पूर्ण होस् भनेर मेनाले अघिका सबै पीर छोडिदिइन् ॥२६–२८॥

अगस्त्य मुनिले भन्नुभयो – हे कार्तिक स्वामी ! आफ्नै टाकुरामा तपस्या गरेर बसेकी तपस्विनी छोरी पार्वतीलाई पनि हिमालयले कसरी देखेनन् ? हे प्रभु ! जन्मने बित्तिकैको मानिस र पर्वत दुबै अज्ञानी हुन्छन्। तैपनि हिमालयले सबैभन्दा ठूलो तपस्थानको गुरुत्व कसरी प्राप्त गरे ? त्यो कुरा मलाई बताउनुहोस् ॥२९–३०॥

कार्तिक स्वामीले भन्नुभयो – जसले सम्पूर्ण चराचर जगत्लाई मोहित तुल्याएको छ, जसको प्रभावले अघि एकपटक विष्णु पनि मोहित हुनुभएको थियो, उहाँको माहात्म्यको बारेमा के बयान गरौं ? जसको मायाले रुद्र, ब्रह्मा, देवता, राक्षस, मुनि र मनुष्य सबै मोहित हुन्छन् भने स्थावरस्वरूप हिमालय पर्वतको के कुरा गर्ने ? जसले आफूखुसी सृष्टि, स्थिति र प्रलय गर्दछिन् तिनैको मायाबाट मोहमा पर्ने व्यक्तिले उनको चरित्र कसरी जान्न सक्छ ? जसका विभूतिहरू देवता र सम्पूर्ण चराचर प्राणीहरू छन्, जसमा प्राणीहरू जन्म लिएर फेरि विलीन हुन्छन्, जसको इच्छाले प्राणीहरू सुख र दुःख प्राप्त गर्छन्, त्यस्ती तीनै लोककी वन्दनीया मायाको महिमा कसले जान्न सक्छ ? भन्नुहोस् त। हे मुनि ! संसारको स्थितिका निमित्त पार्वतीले तपस्या गर्नुभएको थियो र सम्पूर्ण लोकको हितका निमित्त उहाँले शिवजीलाई वरण गर्नुभयो ॥३१–३६॥

---

८. दावेन क्लेशिता गुल्मा इति न.सं.पु.पाठः।
९. यत्ते कामं हृदि स्थितम् इति न.सं.पु.पाठः।
१०. तामजहाद् इति न.सं.पु.पाठः।
१०क. सर्वेषां वद मे हि तत्, इति न.सं.पु.पाठः।
११. प्रलभ्यन्ते चेच्छात्मानो यतो मुने इति न.सं.पु.पाठः।
१२. अवरयत्पुनः इति न.सं.पु.पाठः।

तस्या इच्छास्वरूपिण्या रुद्रेण सङ्गमं मुने। वक्ष्यामि ते विवाहं च शृणु मनःसमाहितः ॥३७॥
एकात्मापि द्विधा भूत्वा तन्मनस्को महाविभुः। लोकसंस्थापनार्थाय प्रजायै चैव नान्यथा ॥३८॥
ईश्वरश्च समाहूय सप्तर्षीनवदत्तदा। गौर्या सार्धं विवाहार्थं कन्याप्रेक्षणहेतवे [१३] ॥३९॥

ईश्वर उवाच

गच्छत[१४] मुनयो यूयं व्योमकूटं महाचलम्। कुरुध्वं मम कार्य्याणि मद्भक्तिषु रताः सदा ॥४०॥
हिमवते च वक्तव्यो मत्सन्देशो मुनीश्वराः। गत्वा तत्र महाशैले तदुच्यते मयाऽधुना ॥४१॥
न च यत्नवतां कार्यं प्राकृताद् भाग्ययोगतः। हिमवन्भवितव्यं यद्दैवाद्धि तद् भविष्यति ॥४२॥
स्वामिनश्चाऽप्यदानाद्वै प्राकृतश्च जनः सुखम्। अवश्यं लप्स्यते तत्तत्[१५] कृत्याकृत्यं पुरा गिरे ॥४३॥
प्राप्तव्यं हि जनैर्नूनं स्वकृततपसः फलम्। तव सुतेप्सितश्चाऽहं सुतपोभिर्विवाहितुम् ॥४४॥
इति तस्मै च वक्तव्यं भवद्भिर्मधुरोक्तिभिः। त्र्यहादूर्ध्वं तथाऽद्यादिर्वैवाहिकदिनं पुनः ॥४५॥

स्कन्द उवाच

ततः सप्तर्षयो धीमन् प्रणेमुश्च महेश्वरम्। तस्य चाऽऽज्ञां समादाय व्योमकूटं ययुर्मुदा ॥४६॥
ददर्श हिमवान् व्योम्नः समागतान्मुनीश्वरान्। उदतिष्ठत्सभास्थानाद्धर्षपूरितमानसः ॥४७॥
प्रणम्य च स्तवैः शीघ्रं हिरण्यार्घ्यैरपूपुजत्। विष्टरेषु समावेश्य मधुपर्काणि सन्ददौ ॥४८॥

हिमवानुवाच

स्वागतं मुनयः श्रेष्ठाः सन्ति वः कुशलानि च। शरीरेषु च लोकेषु सर्ववार्त्ताविशारदाः ॥४९॥
अद्य मे सफलं जन्म चाऽद्य पवित्रितं गृहम्। अद्यैव मे पवित्रात्मा भवन्तो यत आगताः ॥५०॥
किं करोति च वः कार्यं भवत्किङ्कर आशु च। आज्ञा विधीयतां धीरा यस्मादिहागताश्च मे ॥५१॥

---

हे अगस्त्य मुनि ! इच्छाशक्तिस्वरूप भएकी पार्वतीको शिवसँग विवाह भएको कथा म तपाईंलाई बताउँछु, सावधान भएर सुन्नुहोस्। एकात्मा भईकन पनि महाप्रभु शिव त्यतिखेर लोकमा स्थिति स्थापनाका लागि तन्मनस्क बन्नुभयो, अरू कारणले होइन। महादेवले पनि सप्तर्षिलाई बोलाउनुभयो र विवाहका लागि गौरीलाई हेरी आउनु अह्राउनुभयो ॥३७-३९॥

महादेवले भन्नुभयो - मेरो भक्तिमा तत्पर भएका हे ऋषि हो ! तपाईंहरू मेरो कामका लागि हिमालय पर्वतको राजधानी व्योमकूटमा जानुहोस् र मेरो सन्देश हिमालयलाई भन्नुहोस्। मैले भनेको भनी यसो भन्नुहोस् कि "हे हिमालय ! जति प्रयास गरे तापनि पहिले गरेको कार्यले गर्दा मानिसले भवितव्यलाई जित्न सक्दैन, दैवलाई कसैले पनि टार्न सक्दैन। हे गिरिराज ! स्वामीले नदिएता पनि प्राकृत मानिसले अघि गरेको पुण्यले गर्दा अवश्य नै सुख पाउँछ, त्यसैले मानिसले पूर्वजन्ममा राम्रो वा नराम्रो जस्तो काम गरेको हुन्छ, त्यो सबै फल उसले यस जुनीमा पाउँछ। मानिसले गरेको तपस्याको फल अवश्य प्राप्त हुन्छ, तपाईंकी छोरीले तपस्या गरेर मसित विवाह गर्न खोजिन्, त्यही फल उनले पाउँछिन्।" यही कुरा गएर तपाईंहरूले पर्वतराज हिमालयलाई मीठो भाषामा भन्नुहोला। आजको तेस्रो दिनपछिको दिनलाई विवाहको लग्न दिन भनेर निधो गर्नुहोला ॥४०-४५॥

कार्तिक स्वामीले भन्नुभयो - त्यो कुरा सुनेर बुद्धिमान् सप्तर्षिहरू महादेवको निर्देशन लिई उहाँलाई नमस्कार गरेर व्योमकूटतर्फ आनन्दसित प्रस्थान गरे। त्यसपछि हिमालयले आकाशबाट आउन लागेका सप्तर्षिहरूलाई देखी प्रसन्न हुँदै सभाबाट उठेर नमस्कार तथा स्तुति गरी अर्घ्यले पूजा गरेर आसनमा बसाले र मधुपर्क दिए ॥४६-४८॥

हिमालयले भने - हे मुनिश्रेष्ठ ! तपाईंहरूलाई स्वागत छ। तपाईंहरूको शरीरमा त सञ्चै छ ? संसारमा पनि कुशलै त होला नि? हजुरहरू सबै कुरा जान्नुहुन्छ। आज मेरो जन्म सफल भयो, आज मेरो घर पवित्र भयो, आज मेरो आत्मा पवित्र भयो किनभने हजुरहरू यहाँ पाल्नुभयो। हे मुनि हो ! हजुरको यो सेवकले के काम गर्नुपर्‍यो ? जुन काम लिएर हजुरहरू यहाँ पाल्नुभएको छ, म आज्ञा चाहन्छु ॥४९-५१॥

---

१३. गौर्या विवाहितुं सार्द्धम् इति न.सं.पु.पाठः।
१४. गच्छध्वम् इति न.सं.पु.पाठः।
१५. तं लभिष्यति इति न.सं.पु.पाठः।

सप्तर्षय ऊचुः

हिमवन् शृणु वृत्तान्तं यदर्थं वयमागताः[१६] । देवदेवस्य कार्याय सम्प्राप्तास्तव सद्मनि ॥५२॥

अवश्यञ्च भवेद् भावि प्राक्कृतस्य जनस्य वै । अन्यैरपि निषेध्योऽपि दैवयोगेन पूर्वतः ॥५३॥

ईश्वराय च ते पुत्री प्रार्थ्यतेऽद्य हिमालय । तेनैव प्रेषिताश्चात्र तदर्थं वयमागताः ॥५४॥

हिमवन् कुरु तत्कार्यं यदर्थं वयमागताः । मा विलम्बश्च कर्त्तव्यः शर्वकार्ये हिमालय ॥५५॥

योग्यं योग्याय दातव्यं रत्नं रत्नेषु योजयेत् । न रत्नं योज्यते लौहे लौहं न योज्यते मणौ[१७] ॥५६॥

स्कन्द उवाच

ततस्तद्वचनं भूयः समाकर्ण्य हिमालयः । विमृश्य[१८] मेनया सार्द्धमपृच्छत्तान् मुनीन् तदा ॥५७॥

हिमवानुवाच

कोऽसौ शर्वः इति ख्यातः कदापि च न दृष्टवान् । गोत्रं न ज्ञायते तस्य कस्य पुत्रो मुनीश्वराः ॥५८॥

किं शीलं तस्य देवस्य वदन्तु कीदृशाः गुणाः[१९] । रूपञ्जातिं न जानामि चैतत्सर्वं वदन्तु मे ॥५९॥

मरीचिरुवाच

सर्वेशः सर्ववन्द्योऽसौ सर्वभूतानुकम्पकः । सर्वभूताशयो देवस्तस्माच्छर्वः इति श्रुतः ॥६०॥

अत्रिरुवाच

अगोचरस्तथाऽगम्यश्चाऽक्षयो भक्तिवर्जितैः । योगिजनैश्च[२०] देवेशस्ततोऽलक्ष्यः इति श्रुतः ॥६१॥

---

सप्तर्षिहरूले भने – हे हिमालय ! जुन काम लिएर हामी आएका छौं, त्यो वृत्तान्त सुनुहोस् । हामीहरू देवताहरूका पनि देवता महादेवको काम लिएर तपाईंको घरमा आएका छौं । मानिसले पूर्वजन्ममा गरेको कर्मको भावी फल अरूले जतिसुकै रोके तापनि दैवसंयोगले गर्दा प्राप्त भएर नै छाड्छ । हे हिमालय ! महादेवका लागि तपाईंकी छोरी माग्छौं । ईश्वरले नै पठाएर त्यसैका निमित्ति हामीहरू यहाँ आएका हौं । हे हिमालय ! जुन कामका लागि हामीहरू यहाँ आएका छौं, त्यो काम गर्नुहोस्, शिवजीको काममा विलम्ब गर्नुहुँदैन । योग्य वस्तु योग्य पात्रलाई दिनुपर्छ, रत्न रत्नसँगै जोडिन्छ, फलामसित जोडिदैंन । त्यसैगरी योग्य वस्तु पनि अयोग्यमा जोडिदैंन ॥५२-५६॥

कार्तिक स्वामीले भन्नुभयो – सप्तर्षिहरूको यस्तो वचन सुनेर हिमालयले मेनासित सरसल्लाह गरी ऋषिहरूलाई भने ॥५७॥

हिमालयले भने – शिव भनेको को हो ? कहिल्यै देखेको छैन, शिवको गोत्र के हो ? त्यो पनि थाहा छैन । शिव कसका छोरा हुनुहुन्छ ? उहाँको शीलस्वभाव कस्तो छ ? गुन-बैगुन के कति छन् ? रूप कस्तो छ ? उहाँको जात के हो ? मलाई केही थाहा छैन । यो सबै कुरा भन्नुहोस् ॥५८-५९॥

मरीचिले भन्नुभयो – उहाँ सबैका ईश्वर हुनुहुन्छ, सबैका वन्दनीय हुनुहुन्छ । सबै प्राणीहरूमाथि कृपा गर्नुहुन्छ, सबै प्राणीका हृदयमा बस्नुहुन्छ । त्यसैले उहाँलाई शर्व भनिएको हो ॥६०॥

अत्रिले भन्नुभयो – उहाँलाई भक्ति नभएका मानिसले फेला पार्न सक्दैनन्, योगीहरूले पनि उहाँलाई भेट्न मुस्किलै पर्छ, उहाँको स्वरूप निरञ्जन छ । त्यसैले उहाँ अलक्ष्य भनेर प्रसिद्ध हुनुभएको छ ॥६१॥

---

१६. समिहागताः इति न.सं.पु.पाठः ।
१७. न योग्यं योज्यते तथा इति न.सं.पु.पाठः ।
१८. विमर्ष्य इति न.सं.पु.पाठः ।
१९. गुणानि हि तथैव च इति न.सं.पु.पाठः ।
२०. योगिनामपि इति न.सं.पु.पाठः ।

पुलस्त्य उवाच

गोत्रं दत्तञ्च जीवेभ्यस्त्रायते येन गाः सदा। गोचराणि तथा शैल तस्माद्[२१] गोत्रं समुच्यते ॥६२॥

पुलह उवाच

यस्मात्प्रजायते चैष लोकः स्वयमजः श्रुतः। शीलरूपो हि सर्वेषां तस्माच्छीलं[२२] प्रचक्षते ॥६३॥

क्रतुरुवाच

गुणैर्विवर्जितो देवो गुणरूपोऽपि हेमभृत्। त्रिगुणैर्मोहितो लोकस्तस्माद्[२३] गुणात्मकः श्रुतः ॥६३॥

भृगुरुवाच

चाक्षुष्यः सर्वभूतानां चक्षूरूपो महाविभुः। तत्प्रेरकस्वरूपोऽसौ[२४] सर्वरूपस्ततः श्रुतः ॥६४॥

अङ्गिरा उवाच

जीवानां[२५] जातिदो देवो वर्णानाञ्च पृथक् पृथक्। जातिरूपो हि लोकेषु तस्माज्जातिः प्रचक्षते ॥६५॥

सप्तर्षय ऊचुः

ॐ नमः शूलिनेऽजाय शाश्वताय शिवाय ते[२६]। येनोत्सृष्टं जगत्सर्वं तस्मै देवाय वै नमः ॥६६॥

स्कन्द उवाच

श्रुत्वा च वचनं तेषां रुद्ररूपप्रशंसनम्। तन्मायाप्रविमुक्तोऽसावतिहर्षितवान्भृशम् ॥६७॥

देवदेवमिति ज्ञात्वा हिमवाँश्च प्रहर्षितः। व्याचष्ट वचनं तेभ्यो ज्ञानयुक्तो मुनीश्वर ॥६८॥

---

पुलस्त्यले भन्नुभयो – जसले सम्पूर्ण जीवजातिलाई गोत्र दिनुभएको छ, जसले सधैँ पृथ्वी, वेदवाणी, इन्द्रिय र चन्द्रादि गोचरवर्गको रक्षा गर्नुहुन्छ, जसको प्रकाशमा ज्ञानेन्द्रिय, कर्मेन्द्रिय, मन तथा बुद्धिले आ–आफ्ना काम गर्छन् । त्यसैले सबैको रक्षा गर्ने हुँदा उहाँ स्वयम् गोत्रस्वरूप हुनुहुन्छ ॥६२॥

पुलहले भन्नुभयो – जसबाट सम्पूर्ण चराचर जगत् पैदा हुन्छ, जो स्वयम् अजन्मा भनेर प्रसिद्ध हुनुहुन्छ, सम्पूर्ण प्राणीहरूको शीलरूपमा रहनुभएका शर्वको शील पनि त्यही नै हो ॥६३॥

क्रतुले भन्नुभयो – हे हिमालय ! जो तीनै गुणदेखि रहित भएर पनि सर्वगुणसम्पन्न हुनुहुन्छ, जसले सत्त्वगुण, रजोगुण र तमोगुणद्वारा संसारलाई मोहित तुल्याउनुभएको छ, त्यस्ता महादेवका गुन, बैगुन भनेका तिनै हुन् भनेर जाने हुन्छ ॥६३॥

भृगुले भन्नुभयो – सम्पूर्ण प्राणीहरूका चक्षुरूप महाविभु सबैका प्रेरक र प्रकाशक हुनुहुन्छ, त्यसैले उहाँलाई सर्वरूप भनेर जाने हुन्छ ॥६४॥

अङ्गिराले भन्नुभयो – जुन देवताले सम्पूर्ण जीवलाई जात दिनुभएको छ, सम्पूर्ण वर्णलाई पृथक्–पृथक् वर्णमा विभाजन गर्नुभएको छ, सम्पूर्ण लोकको जातिस्वरूप हुनुभएको हुँदा महादेवलाई सर्वजाति भनेर भन्छन् ॥६५॥

सप्तर्षिहरूले भने – त्रिशूल धारण गर्ने अजन्मा शाश्वत् शिवलाई बारम्बार नमस्कार छ। जसले संसारको सृजना गर्नुभयो, त्यस्ता महादेवलाई नमस्कार छ ॥६६॥

कार्तिक स्वामीले भन्नुभयो – सप्तर्षिहरूले गरेको रुद्रस्वरूपको वर्णन सुनेर मायाबाट मुक्त भएका हिमालय अत्यन्त प्रसन्न भए। हिमालयले भगवान् शिव देवताका पनि देवता हुनुहुँदोरहेछ भन्ने ठानी ज्ञानी भएर उनीहरूलाई भने ॥६७–६८॥

---

२१. तस्मै इति न.सं.पु.पाठः।
२२. तस्मै शीलः इति न.सं.पु.पाठः।
२३. तस्मै इति न.सं.पु.पाठः।
२४. तत्प्रेरको हि रूपोऽसौ इति न.सं.पु.पाठः।
२५. जीविनाम् इति न.सं.पु.पाठः।
२६ नमः शिवाय शाश्वते इति न.सं.पु.पाठः।

हिमवानुवाच

अहोभाग्यमहोभाग्यं स्थावरस्य ममाऽद्य वै। त्रैलोक्येशेन मे पुत्री प्रार्थिता साम्प्रतं यतः ॥६९॥
यद्येवं प्रार्थयेदीशः पुत्रीं मे कुलभूषणाम्। अवश्यं खलु दातव्या मया तस्मै मुनीश्वराः ॥७०॥
मनःकायवचोभिश्च दत्ता तस्मै मया सुता। मङ्गलाय सुभव्याय शोधयध्वं दिनं शुभम्[२७] ॥७१॥

सप्तर्षय ऊचुः

अद्यादेश्च त्र्यहादूर्ध्वं सर्वमङ्गलसंयुतम्। तद्दिने चैव कर्त्तव्यो विवाहो वै हिमालय ॥७२॥
केदारदक्षिणे स्थाने त्रियुगी यत्र राजते। विधिवच्छङ्करायाऽऽशु तत्रैव दीयतां सुता ॥७३॥

स्कन्द उवाच

इत्युक्त्वा प्रययुर्भूयो हिमवते सुरर्षयः। कैलाशञ्च महाशैलं यत्र देवो महेश्वरः ॥७४॥
गत्वा ते ऋषयस्तत्र प्रणेमुरीश्वरं मुने। ऊचुस्ते तच्च वृत्तान्तं महादेवाय साम्प्रतम् ॥७५॥
आकर्ण्य वचनं तेषां महादेवोऽतिहर्षितः। सस्मार सर्वदेवाँश्च स्वकीयं सारथिं[२८] तदा ॥७६॥
आजग्मुस्त्वरितं तत्र सगन्धर्वाः सुरा मुने। चन्द्रसूर्यौ च दिक्पाला ब्रह्मा विष्णुर्वृषा तथा ॥७७॥
प्रमथाश्च समाजग्मुश्चतुःषष्टिसुकोटयः। वाहनानि समारुह्य स्वं स्वं शस्त्रास्त्रमुद्यताः ॥७८॥
ययौ रुद्रः समं सैन्यैः संवृतश्चैव साम्प्रतम्। सर्वरत्नाढ्ययानस्थस्त्रियुगी यत्र संस्थिता ॥७९॥
हिमवाँश्च ययौ पूर्वं त्रियुगी यत्र देवता। स्वं स्वं तनुं विधृत्याऽऽशु सर्वशैलैः समं मुने ॥८०॥
उपकरणमादाय पार्वतीञ्चैव मेनया। सप्तर्षीन् योजयामास हिमवानध्वरे तदा[२९] ॥८१॥

---

हिमालयले भने – स्थावर भईकन पनि मेरो कत्रो भाग्य रहेछ, किनभने स्वयम् भगवान् शिवजी मेरी छोरी माग्न आउनुभयो। हे मुनीश्वर हो ! यदि भगवान् शिव माग्नुहुन्छ भने कुलकी गहना भएकी मेरी छोरी पार्वतीलाई अवश्य म उहाँको हातमा सुम्पिदिन्छु। मन, वचन र शरीरले मेरी छोरी मैले शिवजीलाई दिएँ। यसैले तपाईंहरू कल्याणका निमित्त शुभमुहूर्त ठम्याउनुहोस् ॥६९–७१॥

सप्तर्षिहरूले भने – आजको तीन दिनभन्दा पछिल्लो दिन अत्यन्त मङ्गलमय छ, त्यसै दिन विवाह गर्नुपर्छ। केदारको दक्षिणपट्टि त्रियुगीनारायण भन्ने ठाउँ छ। हे हिमालय ! त्यसै स्थलमा विधिपूर्वक विवाह गराई शिवजीलाई छोरी दिनुहोस् ॥७२–७३॥

कार्तिक स्वामीले भन्नुभयो – हिमालयलाई इति भनेर जहाँ भगवान् शिवजी बस्नुभएको थियो, त्यस कैलास पर्वतमा ऋषिहरू गए। त्यहाँ गएर ऋषिहरूले भगवान् शिवजीलाई नमस्कार गरे र भएको सबै वृत्तान्त उहाँलाई निवेदन गरे। ऋषिहरूको वचन सुनेर महादेव अत्यन्त प्रसन्न हुनुभयो। त्यसपछि उहाँले आफ्नो सारथि र सबै देवताहरूलाई सम्झनुभयो ॥७४–७६॥

हे अगस्त्य मुनि ! गन्धर्वले सहित भएका देवताहरू, चन्द्रमा, सूर्य, दिक्पाल, ब्रह्मा, विष्णु र साँढे त्यहाँ तुरुन्त आइपुगे। आ–आफ्ना अस्त्र–शस्त्रहरू लिएर आफ्ना–आफ्ना वाहनमा चढेर चौसठ्ठी करोड प्रमथ आदि गणहरू पनि त्यहाँ आए। सबै रत्नहरूले युक्त भएको वाहनमा चढेर सबै सेनालाई साथमा लिई भगवान् शिवजी त्रियुगीमा जानुभयो। जहाँ देवता र त्रियुगी थिए, त्यसै ठाउँमा सबै पर्वतहरूका साथ आफ्नो–आफ्नो शरीरलाई धारण गरेर पहिले नै हिमालय पुगसकेका थिए। त्यस केदारक्षेत्रमा हिमालय र मेनाले सबै यज्ञका सामग्री तथा पार्वतीलाई साथमा लिएर यज्ञ गर्नका लागि सप्तर्षिहरूलाई लगाए ॥७७–८१॥

---

२७. सतः इति न.सं.पु.पाठः। २८. स्वात्मसारथये इति न.सं.पु.पाठः।
२९. सप्तर्षीन् योजयद्यज्ञे हिमवाँस्तत्र वै तदा इति न.सं.पु.पाठः।

भारद्वाजश्च धौम्यश्च वशिष्ठो गौतमो गुरुः। जमदग्निर्यमश्चैव पैठीनसिः तथापरे ॥८२॥
समाययुर्ग्रहाः सर्वे ऋषयस्तत्र कुम्भज। इजिरे विधिवद्यज्ञं विवाहाय महोत्सवैः ॥८३॥
ज्ञात्वा वैवाहिकं शम्भोर्ग्रहाः सर्वे शुभे स्थिताः। तत्प्रसादाद्वयं श्रेष्ठा भवाम इति भावतः ॥८४॥
शुभे लग्ने शुभे घस्रे हिमवान् विधिवन् मुने। समभ्यर्च्य वरं भक्त्या हराय पार्वतीं ददौ ॥८५॥
प्रादुर्भूतो महानादो नानावाद्यं ननाद च। जगुर्भृशञ्च गन्धर्वा ननृतुश्चाऽप्सरोगणाः ॥८६॥
ववृषुः रक्तपुष्पाणि[३०] लाजासारास्तथैव च। अक्रीडँश्च तदा देवा सिन्दूरैश्च सुगन्धिभिः ॥८७॥
प्रजेपुश्च भृशं सिद्धा ननृतुर्योगिनीगणाः। सप्तर्षयो मुने चक्रुः वेदघोषं मनोहरम्[३१] ॥८८॥
गृहीत्वा च शिवां पाणौ हर्षनिर्भरमानसः। केदारशैलमारुक्षद् रुद्रो योगिनीभिः सह[३२] ॥८९॥
ययुर्देवाः सगन्धर्वाः स्वं स्वं स्थानं मुदा पुनः। हिमवान् व्योमकूटे चाऽभोजयच्च द्विजान्सुखम् ॥९०॥
पर्वतारोहणात्कष्टात्पार्वती घर्मसंयुता। अपतद् घर्मविन्दुश्च तस्या देहाच्छिलोच्चये ॥९१॥
स्वच्छन्दं समुवाहाऽऽशु वेगेन ब्रह्मशेखरात्। तद्घर्मः सहसा जातो नदी शुभ्रोर्मिमालिनी[३३] ॥९२॥
तस्या नाम चकाराऽऽशु नद्या ययार्थमीश्वरः। अतिप्रहर्षितो रुद्रः प्रेक्ष्य देव्यङ्गसम्भवाम् ॥९३॥
यस्माद्देव्यङ्गसम्भूता चाऽत्राऽपतद्गिरौ वरे। तस्मात् केदारगङ्गेति ख्याता देवी नदी भव ॥९४॥
ततो ब्रह्मादयो देवा ऋषयश्च समाययुः। गन्धर्वाश्चाऽप्सरःसिद्धा यक्षरक्षोमहोरगाः ॥९५॥
सस्नुस्तस्यां महानद्यां हर्षपूर्णमनोरथाः। ततश्चाऽलकनन्दां तां भक्त्याऽपूजन्समर्हणैः ॥९६॥

---

हे अगस्त्य मुनि ! भरतद्वाज, धौम्य, वसिष्ठ, गौतम, बृहस्पति, जमदग्नि, यमराज, पैठीनसी र सूर्य आदि नवग्रहहरू पनि त्यस केदार क्षेत्रमा आए र विवाहका निमित्त ठूलो उत्सवका साथ विधिपूर्वक यज्ञ गरे। शिवजीको विवाह हुँदै छ भन्ने थाहा पाएर शुभस्थानमा बसेका सबै ग्रहहरूले हे भगवन् ! हजुरको अनुग्रहबाट हामी ठूलो हुन पाऊँ भनी प्रार्थना गरे ॥८२–८४॥

हे अगस्त्य मुनि ! हिमालय पर्वतले शुभ लग्न भएको शुभ दिन पारेर विधिपूर्वक भक्तिले शिवजीको पूजा गरी पार्वतीको कन्यादान गरे। त्यसबेला धेरै बाजाहरू बजे। बाजाबाट ठूलो स्वर घन्कियो, गन्धर्वहरूले अत्यन्त सुन्दर गाना गाए, अप्सराहरू नाँचे ॥८६॥ देवताहरूले लाजा तथा फूलको वर्षा गरे, सुगन्धित सिन्दूर छरेर उल्लास मनाए ॥८५–८७॥

हे अगस्त्य मुनि ! सिद्धहरूले खूब आशीर्वाद दिए, योगिनीहरू नाँचे, सप्तर्षिहरूले ठूलो स्वरले वेदपाठ गरे। योगिनीलाई साथमा लिएर अत्यन्त प्रसन्न हुनुभएका शिवजी केदार पर्वतमा जानुभयो। प्रसन्न हुँदै गन्धर्वलाई साथमा लिएर सबै देवताहरू आफ्नो–आफ्ना स्थानमा गए। हर्षित हुँदै ब्राह्मणहरूलाई भोजन गराएर हिमालय पनि आफ्नो व्योमकूटमा गए। पहाडमा उकालो हिँड्नुपर्दा परिश्रम परेर पार्वती पसिनै पसिनाले निथ्रुक्क हुनुभयो। उहाँको शरीरबाट पसिनाका बुँदाहरू खसे ब्रह्मशेखरबाट बगेको पार्वतीको पसिनाका थोपाहरू अतिशय तरङ्गले बग्न थाले। त्यस पसिनाबाट सफा तरङ्गले युक्त नदी पैदा भयो ॥८८–९२॥

पार्वतीको अङ्गबाट उत्पन्न भएको त्यस नदीलाई देखेर शिवजी अत्यन्त प्रसन्न हुनुभयो र पार्वतीको अङ्गबाट उत्पन्न भएर उत्कृष्ट केदार पहाडमा बगेकी हुँदा आजदेखि तिमी केदारगङ्गा नामले प्रसिद्ध होऊ भनी नदीको यथार्थ नामकरण गर्नुभयो। त्यसपछि ब्रह्मा आदि गरेका देवताहरू, ऋषिहरू, गन्धर्व, अप्सरा, सिद्ध, यक्ष, राक्षस, ठूला सर्पहरू त्यस केदार क्षेत्रमा आएर खुसी हुँदै त्यस नदीमा स्नान गरे। अलकनन्दा नाम गरेकी नदीको पनि उनीहरूले भक्तिपूर्वक पूजा गरे ॥९३–९६॥

---

३०. ववर्षुः पुष्पवृष्टीश्च इति न.सं.पु.पाठः।
३१. प्रोच्चैर्वेदघोषैः प्रघोषयन् इति न.सं.पु.पाठः।
३२. योगिनीभिः समं रुद्रः केदाराद्रिं समारुहत् इति न.सं.पु.पाठः।
३३. नदीभूतो हि तद्घर्मबहुशुभ्रोर्मिमालिनी इति न.सं.पु.पाठः।

पूर्वं सस्नौ महादेवस्तस्यां भक्त्या महोत्सवैः । सम्पूज्य विधिवत्तां वै प्रमथैश्च समं मुदा ॥९७॥
देवदेवो मुदा तत्र चाऽद्याऽपि तिष्ठति स्म वै । उमया सह नित्यञ्च केदाराद्रौ महोज्ज्वले ॥९८॥
स्नात्वा तस्याञ्च केदारं समारोहति यो मुने । न पुनर्जायते योनौ निधनं तस्य नास्ति च ॥९९॥
सर्वपापैर्विनिर्मुक्तः सूर्याभयानसंस्थितः । परिवारैः समं हर्षैः स याति शिवधामनि[३४] ॥१००॥
उमामहेश्वरौ देवौ यः पश्यति च तत्र वै । शिवशिवेति संस्मृत्य चाऽरोहति च तद्गिरौ ॥१०१॥
निर्धूतसर्वपापोऽसौ प्राप्नोति परमां गतिम् । संत्यज्य भौतिकं देहं निर्वाणं तत्र गच्छति ॥१०२॥
स्वर्गद्वारञ्च तत्सानु यो गच्छति नरोत्तमः । सर्वजन्मार्जितैः पापैः स मुक्तो नात्र संशयः ॥१०३॥
इहलोकं परित्यज्य यो गच्छति मुदा मुने । स्वर्गद्वारं ततः स्वर्गे सर्वकालं हि तिष्ठति ॥१०४॥
त्रियुगाख्यं महाविष्णुं वन्दते यश्च श्रद्धया[३५] । सर्वपापैर्विनिर्मुक्तो विष्णुलोके महीयते ॥१०५॥
विष्णुगङ्गाप्रवाहे च[३६] भक्त्या स्नाति नरो हि यः । शतजन्मार्जितैः पापैः स मुक्तो नात्र संशयः ॥१०६॥
त्रिभिर्युगैश्च येनाऽऽशु त्रैलोक्यं मोहितं पुरा । त्रेताद्वापरसत्यैश्च एकयुगमिव द्विज ॥१०७॥
छलनार्थं बले विष्णुश्चकार तत्तथा युगम् । तपःस्थितस्य दैत्यस्य लोकरक्षार्थमेव च ॥१०८॥
विलेपयति देहं यस्तद्यज्ञकुण्डभस्मना । सर्वपापैर्विनिर्मुक्त उमालोकं स गच्छति ॥१०९॥

एतद्धि तुभ्यं कथितं महत्त्वं[३७] घर्मोद्भवाया जननस्य देव्याः ।
केदारगङ्गेति हि विश्रुता सा मान्या हि देवैः सततञ्च सिद्धैः ॥११०॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे पार्वतीविवाहो नाम षष्टितमोऽध्यायः ॥६०॥

---

सर्वप्रथम त्यस नदीमा ठूलो उत्सवका साथ महादेवले स्नान गर्नुभयो, प्रमथ आदि गणहरूलाई साथमा लिएर उहाँले खुसी हुँदै पूजा पनि गर्नुभयो । देवताका पनि देवता महादेव आज प्रसन्न भएर पार्वतीका साथ त्यस उज्यालो केदारपर्वतमा विराजमान हुनुभएको छ । त्यस नदीमा स्नान गरेर जुन मानिस केदारपर्वतमा आरोहण गर्छ, त्यसले जुनी लिएर फेरि जन्मनु र मर्नु पर्दैन । त्यो व्यक्ति सम्पूर्ण पापबाट मुक्त भएर सूर्यजस्तै चहकिलो यानमा बसेर अत्यन्त आनन्दका साथ परिवारसहित शिवलोकमा जान्छ। जसले केदारपर्वतमा चढेर शिव ! शिव ! भन्दै पार्वती र शिवजीको दर्शन गर्छ, त्यसले सम्पूर्ण पापलाई नाश गरेर ठूलो गति पाउँछ र पञ्चमहाभूतले बनेको शरीरलाई त्याग गरेर त्यो मुक्त हुन्छ। जुन मनुष्य स्वर्गको द्वार भएको त्यस पर्वतमा आरोहण गर्छ, त्यो सबै जन्ममा गरेका पापहरूबाट मुक्त हुन्छ, यसमा सन्देह छैन ॥९७-१०३॥

हे अगस्त्य मुनि ! जुन मानिस स्वर्गद्वारा जान्छ, त्यो यस संसारलाई छोडेपछि सधैँ स्वर्गमा बस्न पाउँछ। जसले त्यहाँ गएर त्रियुग नाम भएका विष्णुलाई नमस्कार गर्छ, त्यो सबै पापबाट मुक्त भएर विष्णुलोकमा पुग्छ र पूजनीय बन्छ। जसले भक्तिपूर्वक विष्णुगङ्गामा स्नान गर्छ, त्यो सय जन्मसम्म गरेको पापबाट मुक्त हुन्छ, यसमा सन्देह छैन। हे अगस्त्य मुनि ! जसले पहिले त्रेता, द्वापर र सत्य युगलाई एकैजस्तो तुल्याएर मोहित तुल्याउनुभयो, बलिलाई छल्नका निमित्त विष्णुको अवतार गराउनुभयो, तपस्यामा संलग्न दैत्यलाई लोकको रक्षाका निमित्त निर्वासित तुल्याउनुभयो, त्यस्ता महादेवको यज्ञकुण्डको खरानी जसले आफ्नो शरीरमा घस्छ, त्यो सारा पापबाट मुक्त भएर शिवलोकमा पुग्छ। सबै देवता तथा सिद्धहरूले बारम्बार मानिएकी पार्वतीको पसिनाबाट उत्पन्न भएकी र केदारगङ्गा नामले संसारमा प्रसिद्ध भएकी तदीको माहात्म्य मैले तपाईंलाई बताए ॥१०४-११०॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा शिव र पार्वतीको विवाहनामक साठियौं अध्याय पूर्ण भयो।

---

३४. शिवलोककम् इति न.सं.पु.पाठः ।
३५. यो वन्दति च तत्र च इति न.सं.पु.पाठः ।
३६. विष्णुगङ्गेति विख्याते इति न.सं.पु.पाठः ।
३७ प्रशंसाम् इति न.सं.पु.पाठः ।

# एकषष्टितमोऽध्यायः

राज्ञो बलेः पातालप्रस्थानम्

अगस्त्य उवाच

बलिना सुकठोरञ्च तपस्तप्तञ्च तत्र वै। त्रियुगाख्ये हरौ कृत्वा भवेयं देवराडिति[1] ॥१॥
ततः शक्रः समागत्य ययाचे तं हरिं वरम्। तत्तपोभञ्जनायाऽऽशु तत्तपःकम्पितो भृशम् ॥२॥

शक्र उवाच

याचेऽहं त्वां विभो विष्णो किञ्चित्कार्यं ममैव च। अनुग्रहश्च कर्त्तव्यः कृपासागर माधव ॥३॥
खण्डयित्वा तपस्तस्य[2] मां केशव समुद्धर। कठोरं तप्तवान् दैत्यो लब्धुकामो मदासनम् ॥४॥

त्रियुग्युवाच

मैवं त्वया च वक्तव्यं मद्भक्ताय तपस्विने[3]। मित्रं वा चाऽपि शत्रुर्वा गरीयान् स तपःस्थितः ॥५॥
प्राप्तव्यं तेन चाऽवश्यं मघवँस्तपसः फलम्। कालदैर्घ्यं करिष्यामि तवागमनकारणात् ॥६॥

स्कन्द उवाच

इत्युक्त्वा त्रियुगी विष्णुरन्तर्दधे हि तत्र च। शक्रोऽपि प्रययौ स्वर्गन्तपस्तेपे बलिर्भृशम् ॥७॥
वितस्तार युगं विष्णुस्त्रयमेकमिवाऽऽशु च। तप्तवाँश्च बलिर्मौनी सहस्राब्दमिवासुरः ॥८॥
लब्ध्वा वरं बलिर्विष्णोस्त्रैलोक्यं सचराचरम्। दिव्यायुतसहस्राब्दं राज्यञ्चकार वै सुखम् ॥९॥
क्वचित्काले बलिर्यज्ञञ्चकार वै महोत्सवैः। निर्जित्य देवताः सर्वाः कृत्वात्मसाच्चराचरम् ॥१०॥
ददौ दानानि[३क] विप्रेभ्यो वासोरत्नानि सर्वशः। रत्नान्यन्नानि विप्रेभ्यः[4] सुखं भोज्यञ्च भोजयन् ॥११॥
देवप्रयाग इत्याख्ये बहुपुण्यफलप्रदे पुनः। सङ्गमे च महातीर्थे जाह्नव्यलकनन्दयोः[5] ॥१२॥

---

## अध्याय – ६१

राजा बलिको पातालप्रस्थान

अगस्त्य मुनिले भन्नुभयो – त्यो त्रियुग नाम गरेको केदारक्षेत्रमा पहिले बलिले "हे भगवन् ! म इन्द्र हुन पाऊँ" भनेर कठोर तपस्या गरे। त्यो कुरा थाहा पाएर बलिको तपस्यालाई भङ्ग गर्न इन्द्रले ज्यादै काँपेर विष्णुलाई भने ॥१–२॥

इन्द्रले भने – हे विष्णु ! हे कृपासागर ! हे माधव ! म हजुरसँग केही कुरा माग्छु, ममाथि कृपा गर्नुहोस्। हे केशव ! बलिको तपस्यालाई तुरुन्त भङ्ग गर्नुहोस्, मेरो उद्धार गर्नुहोस्। त्यो दैत्य मेरो आसनलाई प्राप्त गर्न कठोर तपस्या गर्दैछ ॥३–४॥

त्रियुगी विष्णुले भन्नुभयो – हे इन्द्र ! तिमीले तपस्वी भक्तलाई यस्तो भन्नुहुँदैन। चाहे मित्र होस् या शत्रु, तपस्वी ठूलो हुन्छ। हे इन्द्र ! त्यसले गरेको तपस्याको फल अवश्य पाउनुपर्छ। तिमी आइहाल्यौ, त्यसैले ढिलो गरेर म त्यसलाई वर दिन्छु ॥५–६॥

कार्तिक स्वामीले भन्नुभयो – यति भनेर त्रियुगी भगवान् विष्णु त्यसै ठाउँमा अन्तर्धान हुनुभयो, इन्द्र पनि स्वर्ग गए। बलिले कठोर तपस्या गरे। विष्णुले तीनै युगलाई एउटै बनाउनुभयो। अरू दैत्यले जस्तै हजार वर्षसम्म मौन भएर बलिले तपस्या गरे। बलिले भगवान् विष्णुबाट वर पाएर र चर–अचर प्राणीहरूले युक्त भएको तीनै लोकमा बसेर दिव्य दश हजार वर्षसम्म राज्य गरे। कुनै समयमा बलिले देवताहरूलाई जितेर सबै चराचर जगत्‌लाई आफ्नो वशमा पारी ठूलो उत्सवका साथ यज्ञ गरे। अलकनन्दा र गङ्गाको सङ्गममा रहेको देवप्रयाग नाम गरेको ठूलो पुण्य प्राप्त हुने क्षेत्रमा बलिले ब्राह्मणहरूलाई प्रशस्त लुगा, उत्तम रत्न र अन्नहरू दिए, आनन्दसित भोजन गराए ॥७–१२॥

---

१. चेन्द्रो भवामि चेति वै इति न.सं.पु.पाठः।
२. तस्य तपो वभञ्जाशु इति न.सं.पु.पाठः।
३. तपस्विने च भक्तिने इति न.सं.पु.पाठः।
३क. दायाँश्च इति न.सं.पु.पाठः।
४. विप्राँश्च इति न.सं.पु.पाठः।
५. गङ्गालकनन्दयोः इति न.सं.पु.पाठः।

ययौ विष्णुश्च तद्यज्ञे वेदवित् याचितुं क्षितिम्। खर्वरूपं समाधाय रूपस्वरगुणैर्युतः ॥१३॥
चक्रे वेदध्वनिं खर्वो बलेर्यज्ञे महोत्सवे। दृष्ट्वाऽऽकर्ण्य स्वरं रूपं खर्वस्य हर्षवान् बलिः ॥१४॥
ददौ दानानि खर्वाय हिरण्यरत्नवाससाम्। व्याचष्टे स बलिर्दैत्यान्[६] सर्वस्वं दातुमिच्छया ॥१५॥
तन्मायामोहितो दैत्यो विप्ररूपञ्च नेदृशम्। कदाचन मया दृष्टं सुस्वरं वेदवित्तमम्[७] ॥१६॥
एतस्मै वाद्य दातव्यमनेन च यदीप्सितम्। सर्वस्वमपि मे दैत्या ददेऽधुना महोत्सवे ॥१७॥

बलिरुवाच

भो भो खर्व द्विजश्रेष्ठ रूपगुणस्वरैर्युतः। याच्यतामीप्सितं मां तद्यद्यस्ति तेऽधुना ददे ॥१८॥
अत्राऽऽगत्य निराशत्वं मद्यज्ञे मा कुरु ध्रुवम्। स्वेच्छार्थं तदसौ दैत्यो दास्यति वा न वेति मे ॥१९॥

खर्व उवाच

सर्वं दत्तं त्वया मह्यं दैत्यराज त्वशेषतः। पुनः किञ्चिच्च याचे त्वां त्रिपदस्थानमार्य मे ॥२०॥
एतद्धेतोः समायातो याचकः क्षितिकाङ्क्षया। ख्यातस्त्वं सर्वदो ज्ञात्वा सर्वलोकेप्सितप्रदः ॥२१॥

स्कन्द उवाच

तद्वचनं समाकर्ण्य दैत्यराजः प्रहर्षितः। तिलोदकं सदर्भञ्च गृहीत्वा[८] पाणिना द्रुतम् ॥२२॥
वाक्यार्थञ्च बलिर्भूयः शुक्रमुखं प्रदृष्टवान्। प्रचक्रे च तदा दातुं तस्मै क्षितिं घटोद्भव ॥२३॥
शुक्रोऽपि विष्णुभीतात्मा चाऽसमर्थो निषेधितुम्[९]। विवेश जलपात्रं तद्धारयित्वा स्थितो लघुः ॥२४॥
प्रेक्ष्याऽसुराश्च तच्चेष्टाममन्त्रयन् द्रुतं तदा। निषेधितुं तमूचुस्ते वेपमानाश्च तद्भयात् ॥२५॥

---

वेदवेत्ता विष्णु भगवान् सुन्दर रूप र मीठो बोलीले युक्त भएर वामन रूप लिई पृथ्वी माग्न त्यस यज्ञमा जानुभयो। ठूलो उत्सव भइरहेको बलिको यज्ञमा वामन अवतार विष्णुले गएर वेदध्वनि गर्नुभयो। वामनको स्वर सुनेर, रूप देखेर बलि अत्यन्त प्रसन्न भए। उनले वामनलाई सुन, रत्न र लुगा दिए। विष्णुको मायाले मोहित भएर सर्वस्व दिन चाहने बलिले दैत्यहरूलाई भने – हे दैत्य हो ! वेद जान्ने फेरि मीठो स्वर भएको यस्तो विप्रवटु मैले कहिल्यै पनि देखेको थिइनँ। हे दैत्य हो ! यस ब्राह्मण वटुलाई यसले जे चाहन्छ, सर्वस्व नै मागे पनि यस उत्सवमा म दिन्छु ॥१३-१७॥

बलिले भने – रूप, गुण तथा स्वरले युक्त भएका हे द्विजश्रेष्ठ वामन ! तपाईंलाई जे इच्छा लागेको छ, त्यो कुरा माग्नुहोस्, म अहिल्यै दिन्छु ॥ मेरो यस ठूलो यज्ञमा आएर तपाईं निराश नहुनुहोस्, यसले इच्छा लागेको वस्तु दिन्छ कि दिँदैन भन्ने शङ्का पनि नगर्नुहोस्, जे इच्छा लागेको छ, त्यो कुरा भन्नुहोस् ॥१८-१९॥

वामनले भन्नुभयो – हे दैत्यराज ! तपाईंले मलाई सम्पूर्ण कुरा दिनुभयो। फेरि म तपाईंसँग तीन पाउ जमिन माग्छु, दिनुहोस्। संसारमा जसले जे चाहन्छ, त्यो सबै कुरा दिनुहुन्छ भनी तपाईंले ख्याति प्राप्त गर्नुभएको छ, मलाई जमिन चाहिएको थियो, त्यसैका लागि याचक बनेर म आएको हुँ ॥२०-२१॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! त्यो कुरा सुनेर बलिले खुसी हुँदै हातमा तिल, कुश र जल लिएर सङ्कल्प पढ्न आफ्ना गुरु शुक्राचार्यको मुख हेरे र वामनलाई पृथ्वी दिनका लागि तयार भए। विष्णुको डरले गर्दा दान नदेऊ भन्न नसक्ने शुक्राचार्य पनि कर्मपात्र लिएर त्यहीं अत्यन्त सानो रूप धारण गरी बसे। वामनको चेष्टा देखेर सबै दैत्यहरूले तुरुन्तै सल्लाह गरी डराएर काँप्दै बलिलाई पृथ्वी नदिन अनुरोध गरे ॥२२-२५॥

---

६. बलिर्व्याचष्ट दैत्येभ्यः इति न.सं.पु.पाठः।
७. कदापि न मया दृष्ये वेदविच्चापि सुस्वरम् इति न.सं.पु.पाठः।
८. आदाय इति न.सं.पु.पाठः।
९. निषेधिने इति न.सं.पु.पाठः।

दैत्या ऊचुः

दैत्यराज कुतस्तेऽद्य बुद्धिरेषा समागता। अस्माकञ्च विनाशाय प्रोद्यतोऽसीह साम्प्रतम् ॥२६॥
भविष्यामः पुनर्नष्टा भ्रष्टराज्या न संशयः। नः सङ्कटानि तान्यासन् सुरैः[१०] पुराऽसुरेश्वर ॥२७॥
यैश्च[११] विध्वंसितः पूर्वं पितामहश्च नो विभो। हिरण्यकशिपुश्चाऽन्यो हिरण्याक्षस्तथापरः ॥२८॥
त्वां छलितुं[१२] समायातो विष्णुर्जानीहि निश्चितम्। विप्ररूपं समाधाय खर्वरूपेण मोहयन् ॥२९॥
विष्णुं ज्ञात्वा महाराज विवेकस्थो हि सर्ववित्। मा प्रयच्छ क्षितिं तस्मै कैतवविप्ररूपिणे ॥३०॥
सर्वस्वमपि चाऽस्मै वै दीयतां मा क्षितिस्त्वया[१३]। अवलुम्प्य पुनः स्वर्गमानयामो वसूत्तमम् ॥३१॥

बलिरुवाच

धिग्धिग् दैत्या ध्रुवं युष्मानित्थं दुर्बुद्धिसंयुतान्। उत्सवे दानधर्मे च निषेद्धुं प्रोद्यता यतः ॥३२॥
निषेधति च यो दानं दरिद्रः स भवेत्सदा। धर्मो निषेधितो येन स एव नारकी स्मृतः ॥३३॥
अहोभाग्यं ममैवाद्य प्रह्लाद शृणु धर्मवित्। यदि भवेदयं विष्णुः सर्वदेवैः प्रवन्दितः ॥३४॥
येन दत्तं पुरा मह्यमाश्चर्यं लोकदुर्लभम्। तस्मै मुदा च दातव्यं पात्रायार्य विचारतः ॥३५॥
विष्णुसमं हि किं नास्ति पात्रं प्रह्लाद निश्चयम्। तेन यद्याचितोऽहन्तत्तस्मै दातव्यमाशु वै ॥३६॥
भूत्वा दैत्येश्वरस्तात याचकेभ्यो ददामि न। कलङ्कं मे वदिष्यन्ति लोका धिग्धिगिति द्रुतम् ॥३७॥
भो भो विप्रेश ते पाणिं प्रसारय[१४] च सत्त्वरम्। गृहाण मेदिनीं नूनं भवता च यदीप्सिताम् ॥३८॥

---

दैत्यहरूले भने – हे दैत्यराज ! तपाईंलाई आज यस्तो बुद्धि कहाँबाट आयो ? तपाईं आज हाम्रो नाश गर्न लाग्नुभएको छ। यो दान दिइसकेपछि हामी सबै राज्यबाट वञ्चित भएका हुनेछौँ, यसमा शङ्का छैन। हे दैत्यराज ! यी देवताहरूले गर्दा पहिले हामी कत्रो सङ्कटमा परेका थियौँ। हे प्रभु ! जसले तपाईंको बाजे हिरण्यकशिपु, हिरण्याक्ष र अरू पूर्वजहरूलाई पनि नाश गरेको थियो, उही विष्णु आज तपाईंलाई वामन ब्राह्मणको छद्मरूप लिएर मोहित तुल्याउँदै ठग्न आएको छ भन्ने कुरा बुझ्नुहोस् ॥२६–२८॥

हे महाराज ! यी तिनै विष्णु हुन् भन्ने कुरा बुझेर विवेक गर्नुहोस्। ब्राह्मणको छद्मरूप लिने यी वटुकलाई बरु सर्वस्व दिनुहोस्, पृथ्वी नदिनुहोस्। अरू सम्पत्ति भनेको स्वर्गमा गएर फेरि कमाउन सकिन्छ, तर पृथ्वी कमाउन सकिँदैन। हे महाराज बलि ! हजुरलाई दान दिने इच्छा छ भने अरू सर्वस्व दिनुहोस्, केही छैन तर पृथिवी दान नगर्नुहोस्। धनसम्पत्ति त फेरि फेरि पनि स्वर्गमा गई लुटेर ल्याउन सक्छौं तर पृथिवी ल्याउन सकिँदैन ॥२७–३१॥

बलिले भने – हे दैत्य हो ! यस्तो दुर्बुद्धि भएका तिमीहरूलाई बारम्बार धिक्कार छ। किनभने तिमीहरू यस्तो उत्सवमा गर्न लागेको दान तथा धर्मलाई पनि निषेध गर्न तयार भएका छौ। गर्न लागेको दानलाई जसले गर्नुहुँदैन भनेर निषेध गर्छ त्यो सधैँ दरिद्री हुन्छ। गर्न थालेको धर्मलाई जसले गर्नुहुँदैन भनेर निषेध गर्छ त्यसले सधैँ नरकमा गएर बस्नुपर्छ। हे धर्मज्ञ प्रह्लाद ! सुन्नुहोस्, यदि यी सबै देवताहरूबाट पूजित भगवान् विष्णु नै रहेछन् भने मेरो आज ठूलो भाग्य रहेछ। जसले मलाई पहिले आश्चर्यजनक अत्यन्त दुर्लभ ऐश्वर्य दिएका थिए। हे आर्य ! त्यस्ता पात्रलाई मैले खुसी भएर दान दिनै पर्छ ॥३२–३५॥

हे प्रह्लाद ! निश्चय नै विष्णुसमान अर्को कोही पात्र छैन, उहाँले जे कुरा माग्नुहुन्छ, त्यो कुरा मैले तुरुन्तै दिनुपर्छ। हे प्रह्लाद ! दैत्यको मालिक भएर पनि माग्नेलाई मैले उनीहरूले चाहेको वस्तु दिन सकिनँ भने मेरो ठूलो कलङ्क हुनेछ, दुनियाले मलाई तुरुन्त धिक्कार्न थाल्नेछन्। अनि बलिले वामनलाई भने –हे द्विजश्रेष्ठ ! तुरुन्त हात पसार, तिमीले चाहेको जति पृथ्वी दानका रूपमा ग्रहण गर ॥३६–३८॥

---

१०. न सङ्क्षय अभूवंस्तान्सुरैः इति न.सं.पु.पाठः।
११. येन इति न.सं.पु.पाठः।
१२. छद्मितुम् इति न.सं.पु.पाठः।
१३. क्षितिं त्वया इति न.सं.पु.पाठः।
१३क. यिुष्मानीदृशीबुद्धिसंयुतान्, इति न.सं.पु.पाठः।
१४. प्रसार्यताञ्च इति न.सं.पु.पाठः।

स्कन्द उवाच

आनम्य जलपात्रं स जलमादाय कुम्भज। अनागतं जलं प्रेक्ष्य बलिं खर्वो न्यवेदयत् ॥३९॥
जलधारायने राजन् कुशाग्रञ्च निवेशय। श्रुत्वा खर्ववचो दैत्यः कुशाग्रं निचखान वै ॥४०॥
तद्व्रणाक्षो द्रुतं शुक्रो जलपात्राद्विनिर्गतः ॥४१॥
आदाय पाणिना तोयं दर्भतिलैः समं बलिः। ददौ क्षितिं मुदा भक्त्या खर्वरूपाय विष्णवे ॥४२॥
हाहाकारोऽभवत्[१५] दैत्या जाता म्लानमुखश्रियः। नेदुर्दुन्दुभयो व्योम्नि मुनयः साधु साध्विति ॥४३॥
आदाय पाणिना तोयं स्वीकारं कृतवान् हरिः। ततस्त्रिविक्रमं रूपं विदधे त्रिपदैर्युतम् ॥४४॥
वितस्तार ततो विष्णुः पादत्रयं हि तत्क्षणात्। मेदिन्याञ्च तथा नाके व्योम्न्येवमेव चाऽपरम् ॥४५॥

त्रिविक्रम उवाच

भो दैत्यराज संस्थानं मत्पदस्याऽपरस्य च। इदानीं कुत्र संन्यासः प्रदीयताञ्च तत्त्वया ॥४६॥
स्वर्गव्याप्तं पदं चैकमपरं मेदिनीतले। एकस्य नास्ति दैत्येश स्थानं मद्भक्त तद्वद[१६] ॥४७॥

बलिरुवाच

अहोभाग्यं पुनर्मेऽद्य ह्यवाङ्मनसगोचरम्[१७]। तत्पादमुद्वहाम्याशु यत्सुरैः दुर्लभं हरेः ॥४८॥
नाथ चाऽर्पय मे मूर्ध्नि तेऽवशिष्टं पदञ्च तत्। योगिनां मनसा गम्यं यत्सर्वलोकदुर्लभम् ॥४९॥

त्रिविक्रम उवाच

स्थाप्यते यदि ते मूर्ध्नि मत्पादं भक्त सन्ततम्। गन्तव्यञ्च त्वया शीघ्रं पातालं हि निरन्तरम् ॥५०॥
स्थातव्यं भवता तत्र सर्वदैत्यादृतेन वै[१८]। बले भव च लोकानां स्रष्टा हर्त्ता च पालकः ॥५१॥
प्रह्लादानन्तरं भक्त त्वमिन्द्रो हि भविष्यसि। मन्वन्तरे च दानानां ते प्रभावान्न संशयः ॥५२॥
ततो देवाः सगन्धर्वास्तव शासनतत्पराः। नमस्यन्ति मुहुस्त्वां वै दानधर्मप्रभावतः ॥५३॥
भक्त देवप्रयागे वै स्नानं कुरु यथाविधि। तत्र स्नात्वा च कालान्ते ध्रुवमिन्द्रो भविष्यसि ॥५४॥

---

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! बलिले जलपात्र लिएर जल चुहाउन लाग्दा त्यो आएन। त्यो देखेर वामनले राजा बलिलाई भने – हे महाराज ! पानी निकाल्नका लागि कुशको कुड्को टुटीभित्र पसाल्नुहोस्। वामनको त्यो कुरा सुनेर बलिले कुशले कुड्को टुटीभित्र छिराए। त्यसपछि कुशको टुप्पाले आँखामा घाउ लागेका शुक्राचार्य कमण्डलुबाट बाहिर निस्किए। बलिले कुश, तिल र जल हातमा लिएर भक्तिपूर्वक वामनरूपी विष्णुलाई आनन्दसित पृथ्वी दान गरे। दैत्यहरूले मलिनो मुख लगाएर हाहाकार मच्चाए ॥३९-४२॥

आकाशमा बाजाहरू बजे, ऋषिहरूले ठीक भयो ठीक भयो भने, विष्णुले हातमा पानी थापेर पृथ्वी ग्रहण गर्नुभयो। त्यसपछि तीन पाउले युक्त भएको त्रिविक्रमको रूप भगवान् विष्णुले लिनुभयो र आफ्ना तीनवटा पाउ फैलाउनुभयो। एउटा पाउले पृथ्वी र अर्को पाउले आकाश ढाक्यो ॥४३-४४॥

त्रिविक्रमले भन्नुभयो – हे दैत्यराज ! मेरो अर्को पाउ अर्थात् तेस्रो पाउ राख्ने ठाउँ खोइ ? अब कहाँ लगेर राखौँ ? तिमी मलाई त्यो ठाउँ देऊ। सबैथोक दिन सक्ने हे बलि ! एउटा पाउले स्वर्ग ढाक्यो, अर्को पाउले पृथ्वी ढाक्यो, एउटा पाउका लागि स्थान छैन, त्यो स्थान देऊ ॥४५-४६॥

बलिले भने – हे भगवन् ! वचन र शरीरले पनि कल्पना गर्न नसक्ने मेरो ठूलो भाग्य रहेछ। जसलाई देवता, सारा प्राणी र योगीहरूले पनि प्राप्त गर्न सक्दैनन्, त्यस्तो महत्त्वपूर्ण हजुरको पाउ मेरो शिरमाथि राख्नुहोस् ॥४७-४८॥

त्रिविक्रमले भन्नुभयो – हे भक्त ! यदि मेरो तेस्रो पाउ तिमीले शिरमा धारण गर्छौ भने तिमीले सधैँ पातालमा गएर बस्नुपर्छ। हे बलि ! सम्पूर्ण दैत्यहरूबाट सम्मानित भएर तिमी त्यहाँ बस। प्राणीहरूका सृष्टिकता, संहारकर्ता र पालनकर्ता बन। हे भक्त ! तिम्रो दानको प्रभावले गर्दा अर्को मन्वन्तरमा प्रह्लादपछि तिमी इन्द्र हुनेछौ, यसमा शङ्का छैन ॥४९-५२॥

त्यसपछि दानको प्रभावले गर्दा स्वर्गको आसन सञ्चालन गर्न पुगेका तिमीलाई देवता तथा गन्धर्वहरूले बारम्बार प्रणाम गर्नेछन्। हे भक्त ! देवप्रयागमा विधिपूर्वक स्नान गर। त्यही स्नानको प्रभावले गर्दा तिमी भविष्यमा अवश्य इन्द्र हुनेछौ ॥५३-५४॥

---

१५. हाहाकारा भवेयुश्च इति न.सं.पु.पाठः।
१६. भक्तं च सर्वद इति न.सं.पु.पाठः।
१७. वाङ्मनोऽङ्गस्य गोचरम् इति न.सं.पु.पाठः।
१८. सर्वदैत्यसमादृतः इति न.सं.पु.पाठः।

बलिरुवाच

स्थातव्यं यदि पाताले मया विभोऽसुरैः समम्। स्थातव्यं भवता तत्र मद्गेहे हि निरन्तरम् ॥५५॥
असमर्थो विना त्वाञ्च स्थातुं तत्र विभो हरे। क्षणमपि न मुञ्चामि त्वां मां त्वं च तथाविधम् ॥५६॥

स्कन्द उवाच

ततो देवप्रयागेऽसौ स्नात्वा च विधिवद् बलिः। समाययौ तदा तूर्णं यत्रास्ते हि त्रिविक्रमः ॥५७॥
प्रणम्य शिरसा पादौ व्याजहार हरिं बलिः। अङ्घ्रिमर्पय मे मूर्ध्नि पातालं वै व्रजाम्यहम् ॥५८॥
ततो हरिः पदं मूर्ध्नि संस्थाप्य व्याजहार तम्[१९]। बले वत्स ! त्वया शीघ्रं पातालं[२०] गम्यतामिति ॥५९॥
पातालं प्रययौ शीघ्रं सर्वदैत्यैः समं बलिः। आस्थाय वै हरेः पादं स्वमूर्ध्नि भक्तिपूर्वकम् ॥६०॥
विराजते बलिस्तीव्रं विष्णुचरणमस्तकः। निःशेषैकार्णवे यातेऽभ्यन्तरं तद्यथा गिरिः ॥६१॥
प्रह्लादश्चाभवद्वज्री रुद्रवरप्रसादतः। दिव्यवर्षायुतं भुङ्क्त्वा पाताले दानवाः पुनः ॥६२॥
जातिस्मरणतीर्थे ते कठोरं तेपिरे तपः। सम्प्रेक्ष्य विक्रमं पादं व्योमगङ्गा हरेर्द्रुतम् ॥६३॥
स्वधारयाऽर्हणैर्भक्त्या मुदा ह्यस्नापयत् समम्। तत्पादार्धात्स्रवद्गङ्गा केदारादुत्तरेऽपतत् ॥६४॥
उवाह सा[२१] गिरेः कूटाद् गङ्गा त्रिविक्रमा श्रुता।
उवाह सम्भूय ततश्च गङ्गा त्रिविक्रमाख्यालकनन्दया वै।
सुदुर्लभं तीर्थवरं च लोके[२२] सुसङ्गमे धीर तयोरभूद्धि ॥६५॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे बलिपातालप्रयाणं नामैकषष्टितमोऽध्यायः ॥६१॥

---

बलिले भने – हे प्रभु ! यदि राक्षसहरूका साथ मैले पातालमा बस्नुपर्छ भने मसितै हजुर पनि सधैँ मेरै घरमा बस्नुपर्छ। हे प्रभु ! हजुरविना म त्यहाँ एकछिन पनि बस्न सक्दिनँ। म हजुरलाई छोड्दै छोड्दिन, हजुरले पनि मलाई छोड्न पाउनुहुन्न ॥५५–५६॥

कार्तिक स्वामीले भन्नुभयो – त्यसपछि बलि विधिपूर्वक देवप्रयागमा स्नान गरेर तुरुन्तै त्रिविक्रम भगवान् भएको ठाउँमा आइपुगे। बलिले भगवान्को पाउमा ढोगेर भने – मेरो शिरमा पाउ राख्नुहोस्, पाताल जान्छु। त्यसपछि भगवान्ले बलिको शिरमा पाउ राखेर भन्नुभयो – हे बाबु ! अब तिमी पाताल जाऊ। आफ्नो शिरमा भगवान्को पाउलाई भक्तिपूर्वक राखेर सबै दैत्यहरूलाई साथमा लिँदै बलि तुरुन्त पाताल गए। प्रलयकालमा पानीभित्र डुबेका पहाडहरू जसरी सुशोभित हुन्छन् त्यसैगरी विष्णुको चरण शिरमा राखेर बलि अत्यन्त सुशोभित भए ॥५७–६०॥

जहाँबाट वाग्मती नदी निस्किएकी छन् त्यसै ठाउँमा तपस्या गरेर प्राप्त भएको भगवान् रुद्रको वरले गर्दा प्रह्लाद इन्द्र भए। दिव्य दश हजार वर्षसम्म दानवहरूको पातालमा राज्य गरेर जातिस्मरण नाम गरेको तीर्थमा उनीहरूले कठोर तपस्या गरे ॥६१–६२½॥

भगवान् वामन अवतारको दर्शन गरेपछि आकाशगङ्गाले आफ्नो धाराको पानीले भक्तिपूर्वक प्रसन्न भएर वामन अवतारलाई स्नान गराइन्। वामनको आधा पाउबाट खसेर गङ्गा केदारको उत्तरपट्टि पहाडको शिखरबाट खसेकी छिन्, तिनलाई त्रिविक्रमा नदी भनिन्छ ॥६३–६४½॥

हे अगस्त्य मुनि ! त्यहीँबाट त्रिविक्रमा नाम गरेकी नदी अलकनन्दासँग मिलेर बगेकी छिन्। मानिसहरूले यस तीर्थलाई दुर्लभ तीर्थ मानेका छन्। ती दुई नदीको सङ्गममा उत्कृष्ट तीर्थ बनेको छ ॥६५॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा बलिको पातालगमननामक एकसट्ठियौँ अध्याय पूर्ण भयो।

---

१९. सन्यस्य त्वं बलेर्मुने इति न.सं.पु.पाठः।
२०. व्याजहार तदा वत्सा पातालम् इति न.सं.पु.पाठः।
२१. प्रववाहः इति न.सं.पु.पाठः।
२२. स लोकैः इति न.सं.पु.पाठः।

# द्विषष्टितमोऽध्यायः

## अनेकतीर्थानां नामनिरूपणम्

अगस्त्य उवाच

पास्यामि[1] शीतलाङ्गोऽहं तव मुखोद्भवामृतम्। तन्माधुर्यामृतं भूयः पानाय जृम्भते मनः ॥१॥
समुद्भवो हि गङ्गानां त्वत्प्रसादाच्छ्रुतो विभो। तासां सुसङ्गमे तीर्थे स्नात्वा वद कियत्फलम् ॥२॥

स्कन्द उवाच

तयोः सुसङ्गमे तीर्थे त्रिविक्रमालकाख्यके। संसस्नुर्ऋषयो देवा सिद्धाश्च खेचरास्तथा ॥३॥
त्रिविक्रमाख्ये तीर्थे ते स्नानात् फलानि लेभिरे[2]। सर्वकाले युवानस्ते चाऽभवन् त्रिदशा अपि[3] ॥४॥
देवताभ्य ऋते तत्र सर्वलोकैरगोचरे। कदाचिद्दैवयोगेन स्नातकस्य फलं शृणु ॥५॥
शङ्खञ्चक्रं गदामब्जं सम्यग् धृत्वा चतुर्भुजैः। वैनतेयविमानस्थो विष्णुकन्यासमावृतः ॥६॥
वाद्यैर्नवरसैस्तत्र चाऽप्सरोभिः प्रमोदितः[4]। चामरैर्धूयमानोऽसौ बहुमान्यपुरस्सरैः ॥७॥
गच्छति विष्णुलोकं स सदेहो नात्र संशयः। स्वीयाभिर्भासयन् भाभिर्द्वितीय इव सोऽच्युतः ॥८॥
शिव शिवेति सम्प्रोच्य तत्र स्नानं करोति यः। यः पूजयति रुद्रं तं[5] तस्य पुण्यफलं शृणु ॥९॥
दशार्काभविमानेन रुद्रलोकं स गच्छति। महोल्लासमहानन्दो वृषवाहनसङ्गतः[6] ॥१०॥

---

## अध्याय - ६२

### अनेक तीर्थहरूको नामनिरूपण

अगस्त्य मुनिले भन्नुभयो - हजुरका मुखारविन्दबाट निस्किएको वचनरूपी अमृत पान गरेर मेरो अङ्ग शीतल भएको छ, अझै त्यो मधुरामृत पान गर्ने इच्छाले मेरो यो मन पुनः लालायित भएको छ। हजुरको अनुग्रहले मैले अनेक गङ्गाजीहरूको उत्पत्तिका बारेमा सुनें, ती नदीहरूको सङ्गम रहेका तीर्थमा स्नान गर्दा के कस्तो फल प्राप्त हुन्छ ? मलाई यो सुन्नाको अभिलाषा छ ॥१-२॥

कार्तिक स्वामीले भन्नुभयो - त्रिविक्रमा र अलकनन्दा नदीको सङ्गमलाई त्रिविक्रमालक नाम गरेको तीर्थ मानिएको छ। त्यस तीर्थमा देवता, सिद्ध र ग्रहहरूले स्नान गरेका थिए। त्रिविक्रम नाम गरेको तीर्थमा स्नान गरेर उनीहरूले धेरै फल प्राप्त गरे। देवताहरू पनि सबै समय युवक अवस्थामा रहने भए। देवताहरूका लागि अमृतमय बनेको त्यस नदीमा सबै प्राणीहरूले स्नान गर्न पाउँदैनन्। त्यस नदीमा मानिसले भाग्यवश कुनै मौकामा मात्र स्नान गर्न पाउँछन्। त्यस तीर्थमा स्नान गर्दा के फल प्राप्त हुन्छ, त्यो सुन्नुहोस् ॥३-५॥

हे अगस्त्य मुनि ! ती स्थानमा गएर चार हात भएका भगवान् विष्णु शङ्ख, चक्र, गदा र कमल हातमा लिएर विभिन्न कन्याहरूका साथ गरुडमाथि चढेर बस्नुभएको छ। यस तीर्थमा स्नान गर्ने व्यक्तिलाई नयाँ-नयाँ रसले भरिएका गानाबजानाका साथ आनन्द दिलाउँदै चामर हम्कँदै विष्णुलोकका किशोरीहरूले बडो सम्मानका साथ लैजान्छन्। त्यो व्यक्ति सबै दिशालाई आफ्नो कान्तिद्वारा उज्यालो तुल्याउँदै भगवान् विष्णुजस्तै बनेर विष्णुलोकमा जान्छ, यसमा सन्देह छैन ॥६-८॥

जसले त्यस तीर्थमा शिव शिव उच्चारण गर्दै स्नान गर्छ र भगवान् रुद्रको पूजा गर्छ, त्यसको के फल हुन्छ, म बताउँछु सुन्नुहोस्। यस्तो व्यक्ति स्नानको पुण्यका प्रभावले अत्यन्त उमङ्ग र आनन्दका साथ दशवटा सूर्यको कान्तिजस्तै कान्ति भएको विमान चढेर भगवान् शिवको पार्श्ववर्ती हुन रुद्रलोक जान्छ ॥९-१०॥

---

१. प्रपाश्य इति न.सं.पु.पाठः।
२. स्नात्वाऽलभन् फलानि वै इति न.सं.पु.पाठः।
३. सर्वकाले युवावस्था अभवत्त्रिदशा अपि इति न.सं.पु.पाठः।
४. अप्सरसां प्रमोदयन् इति न.सं.पु.पाठः।
५. रुद्रं पूजति भूयो वै इति न.सं.पु.पाठः।
६. महोल्लासमहान्दं वृषवाहनसन्ततम् इति न.सं.पु.पाठः।

अयुतानां कुलानां स सर्वपापं विमोचयन्। तत्संख्यैः पितृभिः सार्द्धं सदेहो गच्छति द्रुतम् ॥११॥
स्नानं दत्तं हुतं जप्तं तत्सर्वमक्षयं भवेत्। सहस्रगुणपुण्यं स कृतादन्यत्र प्राप्नुयात्[७] ॥१२॥
सा चैवाऽलकनन्दा च तथा भागीरथी परा। तयोः सङ्गमतीर्थं तद् देवप्रयाग उच्यते[८] ॥१३॥
प्रकर्षेणाऽमरास्तत्र चाऽऽयाताः स्नातकाः पुनः। गच्छन्ति त्रिदिवं तस्माद् देवप्रयाग उच्यते[९] ॥१४॥
स्नात्वा तत्राऽमरैर्लब्धममरत्वं निरन्तरम्। उमेश्वरप्रसादाद्वै चाऽद्यापि तेऽमराः श्रुताः ॥१५॥
तत्र स्नानं प्रकुर्वन्ति पुण्यात्मानश्च ये नराः। तिष्ठन्ति सुचिरं स्वर्गे लब्ध्वा देवकलेवरम् ॥१६॥
येऽर्चयन्ति[१०] महाशम्भुं भक्त्या तत्र घटोद्भव। सकृन्मात्रेण संस्नाय तेषां पुण्यफलं शृणु ॥१७॥
सूर्यायुतप्रतीकाशविमानस्था नरोत्तमाः। कोटिकुलैः समं शैवं गच्छन्ति नगरं मुदा ॥१८॥
कल्पकोटिशतं साग्रं महीयन्ते शिवास्पदे[११]। कामतश्चेत्पुनस्ते वै भविष्यन्ति[१२] नृपाः क्षितौ ॥१९॥
हव्यं कव्यं जपं दानं तत्र कुर्वन्ति मानुषाः। पुण्यं कोटिगुणं लब्ध्वा मोदन्ते शिवधामनि[१३] ॥२०॥
मेदिन्यां यानि तीर्थानि सन्ति तेष्वाप्लवाच्च यत्[१४]। पुण्यं तत्र सकृत् स्नात्वा भवेत् कोटिगुणं फलम्[१५] ॥२१॥
स्नात्वा देवप्रयागे ये पञ्चगङ्गासुसङ्गमे। तत्राऽर्चन्ति महेशानं ते यान्ति परमां गतिम् ॥२२॥

---

दश हजार वंशका सम्पूर्ण पापहरूलाई नाश गरेर त्यति नै संख्या भएका पितृहरूका साथ शरीरैसहित त्यो व्यक्ति तुरुन्त रुद्रलोक जान्छ। त्यस तीर्थमा स्नान गरेको, दान दिएको, जप गरेको सबै अक्षय हुन्छ। अरू तीर्थमा गरेको भन्दा हजार गुणा बढी फल यसबाट हुन्छ। ती अलकनन्दा र भागीरथी नदीको सङ्गम भएको तीर्थलाई देवप्रयाग भनिन्छ। त्यहाँ धेरै देवताहरू बारम्बार आएर स्नान गर्छन् र स्वर्ग जान्छन्। त्यसैले त्यस तीर्थलाई देवप्रयाग तीर्थ भनिएको हो। देवताहरूले त्यस तीर्थमा स्नान गरेर भगवान् शिवजीको कृपाले गर्दा सधैँका लागि अमरत्व प्राप्त गरे। त्यसैले आज उनीहरूलाई अमर भनेर भनिन्छ। जुन पुण्यात्मा मानिसहरू त्यस देवप्रयाग तीर्थमा गएर स्नान गर्छन्, तिनीहरू देवताको शरीर लिएर धेरै समयसम्म स्वर्गमा बस्छन् ॥१२-१६॥

हे अगस्त्य मुनि ! जसले त्यस तीर्थमा एकपटक मात्रै भए पनि विधिपूर्वक स्नान गरेर भक्तिपूर्वक भगवान् शिवजीको पूजा गर्छन्, तिनीहरूले पाउने पुण्यफल बताउँछु, सुन्नुहोस्। ती उत्तम पुरुषहरू दश हजार सूर्यको जस्तो तेज भएको विमानमा चढेर करोडौँ वंशजहरूका साथ सहर्ष शिवजीको लोकमा जान्छन्। तिनीहरू करोडौँ सय कल्पभन्दा पनि बढी रुद्रलोकमा ससम्मान बस्छन् र इच्छानुसार फेरि पृथ्वीमा जन्मिएर राजा हुन पाउँछन्। त्यस देवप्रयाग तीर्थमा जुन मानिसहरूले हव्य, कव्य, जप र दान गर्छन् तिनीहरू करोडौँ करोडगुणा पुण्य प्राप्त गरेर स्वर्गमा सुखभोग गर्न पुग्छन् ॥१७-२०॥

देवप्रयाग तीर्थमा एकपटक स्नान गर्दा पृथ्वीमा जति पनि तीर्थहरू छन् तिनीहरूमा स्नान गर्नुभन्दा करोडौँ गुणा बढी फल प्राप्त हुन्छ। पाँचवटा गङ्गा मिलेको देवप्रयाग तीर्थमा जसले स्नान गरेर भगवान् शिवको पूजा गर्छन् तिनीहरूले परमगति प्राप्त गर्छन् ॥२१-२२॥

---

७. सहस्राणां गुणं तत्र अन्यत्र च कृताल्लभेत् इति न.सं.पु.पाठः।
८. तासां सुसङ्गमं तीर्थं देवप्रयागमुच्यते इति न.सं.पु.पाठः।
९. देवप्रयागमुच्यते इति न.सं.पु.पाठः।
१०. ये प्रार्चन्ति इति न.सं.पु.पाठः।
११. रुद्रलोके महीयते इति न.सं.पु.पाठः।
१२. जनिष्यन्ति इति न.सं.पु.पाठः।
१३. कोटिकोटिगुणं पुण्यं लब्ध्वा मोदन्ति दिव्यके इति न.सं.पु.पाठः।
१४. तेष्वाप्लवान्मुने इति न.सं.पु.पाठः।
१५. तत्र सकृन्नरः स्नात्वा कोटिकोटिगुणं फलम् इति न.सं.पु.पाठः।

ज्ञानयुक्तो नरस्तत्र संस्तौति विधिपूर्वकम्। इह लोकं परित्यज्य प्राप्नोति परमं पदम् ॥२३॥
सङ्गमे त्रियुगीगङ्गाकेदारगङ्गयोरिह[१६]। कामप्रयाग इत्याख्यं तीर्थं तन्मुनिसेवितम्[१७] ॥२४॥
तत्र स्नात्वा दिवं यान्ति लब्ध्वा देवकलेवरम्। इह लोके सुखं भुक्त्वा मनसा यच्च काङ्क्षितम्[१८] ॥२५॥
यं यं कामं नरः कृत्वा संस्नाति भक्तितो मुने। तं तं प्राप्नोति शीघ्रं स देहान्ते च भवेत्सुरः ॥२६॥
याः काः स्त्रियः समिच्छन्ति पुरुषानपि तत्र वै। तान् तान् स्नात्वा लभेरन् ता[१९] रूपशीलगुणान्वितान् ॥२७॥
तदधश्च महातीर्थमृषिभिः सेवितं शुभम्। तत्र स्नात्वा द्विजत्वञ्च लभेच्छूद्रोऽपि जन्मनि ॥२८॥
भृगुधारासुसंयुक्तं ब्रह्मप्रयागसंज्ञकम्। ब्रह्मणा सेवितं पूर्वं सप्तर्षिभिः समं मुने ॥२९॥
तत्र स्नात्वा नरश्रेष्ठो ब्रह्मत्वं प्राप्नुयात्क्षणात्। इहलोकं परित्यज्य सर्वलोकैः सुदुर्लभम् ॥३०॥
ऊर्ध्वं रुद्रप्रयागे यः स्नानं करोति मानुषः। इहलोकञ्च संत्यज्य रुद्रलोके महीयते ॥३१॥
ततो विष्णुप्रयागे च संस्नाति नृवरो मुने। इहलोकं परित्यज्य विष्णुस्थानं स गच्छति ॥३२॥
सर्वाद्ये च महातीर्थे सप्तर्षिभिः प्रसेविते। गङ्गातीरे च यः स्नाति भवेद्विप्रः पुनर्भवे ॥३३॥
विशालभद्रासंमिश्रे सिद्धगणैः सुसेविते। तत्र स्नात्वा भवेन्मर्त्यः सिद्धदेहो हि तत्क्षणात् ॥३४॥
स्थावरैर्जङ्गमत्वञ्च यत्र लब्धं जलाप्लवात्। स्नात्वा तत्राऽन्त्यजोऽप्याशु देहान्ते ब्राह्मणो भवेत् ॥३५॥
सर्वाधश्च महातीर्थे गङ्गाशैलाद्विनिःसृते। तप्त्वा भगीरथो राजा गङ्गामावाहयत्पुरा ॥३६॥
तत्र स्नात्वा भवेद् भूपस्त्यक्त्वान्ते तत्तनुं नरः। वर्जितो दानधर्मैश्च प्राकृतोऽपि जनो हि च ॥३७॥

---

जानी-जानीकन जुन मानिसले त्यस तीर्थमा विधिपूर्वक स्नान गर्छ त्यो व्यक्ति यो संसार छाडेपछि परमपदमा पुग्छ। त्रियुगा र केदारगङ्गाको सङ्गममा कामप्रयाग नाम गरेको तीर्थ छ। त्यहाँ देवर्षिहरू आएर बसेका हुन्छन्। त्यस तीर्थमा स्नान गर्नाले मानिस देवताको शरीरलाई प्राप्त गरेर स्वर्ग जान्छ। यस लोकमा सुखभोग गरेर आफ्ना मनमा लागेको सम्पूर्ण कुरा प्राप्त गर्छ। जुन मानिसले जुन-जुन कामना गरेर भक्तिपूर्वक त्यस तीर्थमा स्नान गर्छ उसले तुरुन्तै ती-ती सबै चाहनाहरू प्राप्त गर्छ र शरीर छोडेपछि देवता हुन्छ ॥२३-२६॥

जुन स्त्रीहरूले त्यहाँ गएर स्नान गरी जस्तो खालका पुरुषको चाहना गर्छन् अर्थात् जस्तो रूप, शील र गुणले युक्त भएका पुरुषहरूको कामना गरेका हुन्छन् तिनीहरूले त्यस्तै खालका पुरुषहरू पाउँछन्। त्यसभन्दा तल ऋषिहरूले पनि सेवा गरिएको महातीर्थ छ। त्यहाँ स्नान गर्दा शूद्र पनि यसै जन्ममा ब्राह्मण हुन्छ। त्यहाँ सप्तर्षि र ब्रह्माले सुसेवित, भृगुधाराले युक्त भएको ब्रह्मप्रयागनामक प्रसिद्ध तीर्थ छ। त्यस तीर्थमा स्नान गर्नाले सबै प्राणीले पाउन नसक्ने ब्रह्मत्वलाई यो संसार छोडेपछि मानिसले तुरुन्तै प्राप्त गर्छ। त्यसभन्दा माथि रुद्रप्रयाग तीर्थ छ। जुन मासिनले त्यस तीर्थमा स्नान गर्छ, त्यसले यो संसारलाई त्यागेर गएपछि रुद्रलोकमा सम्मानका साथ बस्न पाउँछ ॥२७-३१॥

हे अगस्त्य मुनि ! जुन मानिसले विष्णुप्रयागमा स्नान गर्छ, त्यो यस संसारबाट मुक्त भएपछि विष्णुलोक जान्छ। सबैभन्दा पहिलो, सप्तर्षिहरूद्वारा सुसेवित, गङ्गाको तीरमा अवस्थित महातीर्थमा जसले स्नान गर्छ, त्यो व्यक्ति अर्को जन्ममा ब्राह्मण भएर जन्मन्छ। विशालभद्रा मिसिएको, सिद्धगणले सुशोभित तीर्थमा स्नान गऱ्यो भने मानिस तुरुन्त नै सिद्धदेह भएको हुन्छ। जहाँ स्नान गर्नाले अचर जगत् पनि चर भएका थिए, त्यस ठाउँमा स्नान गर्दा शूद्र पनि तुरुन्त नै ब्राह्मण हुन्छन्। सबभन्दा तल जहाँ भगीरथ राजाले तपस्या गरेर गङ्गालाई बगाएका थिए, त्यस्तो महातीर्थमा स्नान गर्दा दान, धर्म केही नगर्ने प्राकृत मानिस पनि शरीर छोडेपछि अर्को जन्ममा राजा हुन पाउँछ ॥३२-३७॥

---

१६. त्रियुगाख्या महागङ्गाकेदारगङ्गयोः समे इति न.सं.पु.पाठः।
१७. देवर्षिभिश्च सेवितम् इति न.सं.पु.पाठः।
१८. मनसो काङ्क्षितानि यत् इति न.सं.पु.पाठः।
१९. तं तं स्नात्वा लभेयुस्ता इति न.सं.पु.पाठः।

मोक्षार्थी लभते मोक्षं भोगार्थी भोगमेव च। कामयते च कामार्थी यं स्नानात् लभते हि तम्[२०] ॥३८॥
भगीरथेन वै तप्तं दिव्यवर्षशतं पुरा। रुद्रपादसरिद्यत्र गङ्गामानयितुं[२१] मुने ॥३९॥
रुद्रसरिति[२२] गङ्गायां तयोश्च सङ्गमे शुभे। स्नात्वा तत्र तनुं त्यक्त्वा प्राप्नोति परमं पदम् ॥४०॥
अत ऊर्ध्वं प्रवक्ष्यामि गङ्गापश्चिमदेशतः। ब्रह्मणो वेदघोषेण पतिताः[२३] ब्रह्मविन्दवः ॥४१॥
एका शृङ्गाद्रिसानोश्च पवित्रा[२४] समुवाह वै ॥४२॥
योगधर्मैरपि त्यक्तो नरः स्नाति च तत्र वै। संसारञ्च परित्यज्य ब्रह्मत्वं प्राप्नुयाद् ध्रुवम् ॥४३॥
तत्पश्चिमोत्तरे भागे सवितुस्तनया नदी। यमानुजा मुने चाऽऽसीदृषिणा सा द्रवीकृता ॥४४॥
हिरण्यबाहुर्नाम्ना[२५] च ह्यासीत्तत्पश्चिमे किल[२६]। हिरण्यवेत्रसङ्कीर्णा देवदानवसेविता ॥४५॥
एतयोः सङ्गमे तीर्थे लोककामफलप्रदे। प्रकरोति च यः स्नानं तस्य पुण्यफलं शृणु ॥४६॥
सप्तजन्मार्जितैः पापैर्मुच्यते चाऽऽप्लवाद् ध्रुवम्। जाम्बूनदविमानस्थो स्वर्गलोकं स गच्छति ॥४७॥
स्वस्वसुश्च जलस्नानात् सुसन्तुष्टो यमो भृशम्। ददाति सर्वगं यानं स्नातकाय न संशयः ॥४८॥
तद्यानस्थो नरः स्नायी त्रिसप्तस्वकुलैः समम्। आभ्रम्य सर्वलोकान् स यथेप्सिते प्रतिष्ठति ॥४९॥
तत्पश्चिमप्रदेशे च सितप्रवा च नाम सा। तयोश्च सङ्गमे तीर्थं सुखदं नाम विश्रुतम्[२७] ॥५०॥

---

त्यहाँ स्नान गरेर मोक्ष चाहने मानिसले मोक्ष पाउँछ, सुखभोग चाहने मानिसले सुखभोग पाउँछ, मानिसले जे जे चाहन्छ, त्यही त्यही पाउँछ। जहाँ रुद्रका पाउबाट नदी निस्किएको छ, त्यस तीर्थमा अघि भगीरथ राजाले गङ्गालाई ल्याउन दिव्य सय वर्षसम्म तपस्या गरेका थिए। रुद्रनदी र गङ्गाको कल्याणदायक सङ्गमस्थलमा स्नान गर्नाले मानिसले शरीर छोडेपछि परमपदलाई प्राप्त गर्छ ॥३८-४०॥

यसपछि म गङ्गाभन्दा पश्चिमतिरका तीर्थहरूको बारेमा बताउँछु। त्यहाँ ब्रह्माको वेदको ध्वनिले ब्रह्मविन्दु बर्साउने एक पवित्र नदी शृङ्गाद्रिको चुचुराबाट बगेकी छन्। योगधर्मको आचरण नगर्ने मानिसले पनि त्यस नदीमा गएर स्नान गऱ्यो भने संसारलाई छाडेपछि अवश्य ब्रह्मत्व प्राप्त गर्छ। त्यसको पश्चिमोत्तर दिशामा सूर्यकी छोरी, यमराजकी बहिनी यमुना नाम गरेकी नदी बगेकी छन्। उनलाई ऋषिहरूले बगाएका थिए ॥४१-४४॥

पश्चिम दिशामा सुवर्णमय वेत्रलताले वेष्टित देवता र दानवहरूद्वारा सुशोभित हिरण्यवाहु नाम गरेको नदी छन्। प्राणीहरूको कामना पूर्ण गर्ने यी दुईको नदीको सङ्गमस्थल भएको तीर्थमा स्नान गर्नो के पुण्य प्राप्त हुन्छ, त्यसको फल सुन्नुहोस्। यस तीर्थमा स्नान गर्नाले सात जन्मदेखि गर्दै आएको सम्पूर्ण पापबाट मानिस मुक्त हुन्छ, त्यसले सुवर्णमय विमानमा बसेर स्वर्ग जान पाउँछ। आफ्नी बहिनीको जलमा स्नान गरेको हुँदा अत्यन्त प्रसन्न भएका यमराजले त्यसरी स्नान गर्ने व्यक्तिलाई इच्छाअनुसार जता पनि जान सक्ने विमान दिन्छन्, यसमा शङ्का छैन। यमुनामा स्नान गर्ने व्यक्ति एक्काइस कुललाई नै साथमा लिएर त्यस यानमा चढी सम्पूर्ण संसार भ्रमण गरेर इच्छा लागेको स्थानमा पनि बस्न सक्छ। त्यसको पश्चिमपट्टि सितप्रवा नाम गरेकी नदी छन्। यमुना र सितप्रवाको सङ्गम भएको तीर्थस्थल अत्यन्त सुखदायक छ भनेर प्रसिद्ध छ ॥४५-५०॥

---

२०. यं यं काम्यति कामार्थी स्नानात्प्राप्नोति तं हि तम् इति न.सं.पु.पाठः।
२१. गङ्गामावाहितुम् इति न.सं.पु.पाठः।
२२. रुद्रसरिच्च इति न.सं.पु.पाठः।
२३. सविता इति न.सं.पु.पाठः।
२४. एकं शृङ्गाद्रिसानौ च पवित्रा इति न.सं.पु.पाठः।
२५. नामा इति न.सं.पु.पाठः।
२६. दिशि इति न.सं.पु.पाठः।
२७. तीर्थः सुखदो नाम विश्रुतः इति न.सं.पु.पाठः।

तत्र स्नात्वा सुखं मर्त्यः सम्प्राप्नोति न संशयः । यावज्जीवं मुने तस्य[२८] सर्वजन्मनि जन्मनि ॥५१॥
दक्षतीर्थे नरः स्नात्वा चाऽऽजन्म सर्वकर्मसु । दक्षो भवति शीघ्रं स दक्षतीर्थजलाप्लवात् ॥५२॥
प्रजापतिः पुरा दक्षः कृत्वा यज्ञं महोत्सवैः । सस्नौ तत्र[२९] कृतोऽजेन तीर्थनाम[३०] च तस्य वै ॥५३॥
तदुत्तरे च संस्नाति विष्णुतीर्थे नरः पुनः । प्राप्नोति विष्णुसायुज्यं त्यक्त्वा च तत्कलेवरम् ॥५४॥
विष्णुना च कृतः पूर्वं योगाभ्यासः सनातनः[३१] । तत्कुण्डाद्धि समुद्भूतं विष्णुतीर्थमिति स्मृतम्[३२] ॥५५॥
तत्पश्चिमोत्तरे भागे नितम्बे रत्नवद्गिरेः । समुद्भूता नदी शीता रत्नकाञ्चनसैकता ॥५६॥
शीतासमुद्रयोर्धीमन् सङ्गमे देवपूजिते । स्नानं करोति तत्तीर्थे तत्पुण्यफलमुच्यते ॥५७॥
गङ्गासागरसंयोगे स्नानाद्यावत्फलं भवेत् । तत्पुण्यकोटिगुणितं सकृत्स्नात्वाऽऽप्नुयान्नरः[३३] ॥५८॥
तीर्थे शीतासमुद्रे वै देवर्षिदैत्यसेविते ॥५९॥
सर्वमायां परित्यज्य जाम्बूनदविमानगः । गच्छति परमं स्थानं सदानन्दे शिवालये ॥६०॥
त्रिकोटिसन्ततिं स्नायी समुद्धृत्य त्वधः स्थिताम् । तद्यानं शार्वमास्थाय रुद्रलोके महीयते ॥६१॥
तत्र ज्योतिःसमुद्भूतं पूजति ज्योतिरीश्वरम्[३४] । ज्योतिस्तीर्थे च यः स्नात्वा तस्य पुण्यफलं शृणु ॥६२॥
सर्वजन्मार्जितैः पापैः स मुक्तस्तत्क्षणान्मुने । अयुतार्काभयानस्थो रुद्रलोकं प्रगच्छति[३५] ॥६३॥

---

त्यहाँ स्नान गर्ने मानिसले प्रत्येक जन्ममा जीवन रहेसम्मका लागि सधैँ सुख पाउँछ, यसमा शङ्का छैन । जो मानिस दक्षतीर्थमा स्नान गर्छ, त्यो सबै काममा जन्मभरि सिपालु हुन्छ, त्यो तुरुन्त दक्ष हुन्छ । अघि दक्षप्रजापतिले त्यस तीर्थमा स्नान गरेर बडो उत्सवका साथ यज्ञ गरेका थिए, त्यसैले ब्रह्माले त्यस तीर्थको नाम दक्षतीर्थ राख्नुभएको हो । त्यसभन्दा उत्तरतर्फ रहेको विष्णुतीर्थमा जुन मानिसले स्नान गर्छ, यसले आफ्नो शरीर छोडेपछि विष्णुसायुज्य अर्थात् मुक्ति पाउँछ ॥५१-५४॥

अघि त्यहाँको कुण्डबाट पैदा हुनुभएका विष्णुले परम्परादेखि चल्दै आएको योगाभ्यास गर्नुभएको थियो । त्यसैले त्यो तीर्थ विष्णुतीर्थ नामले प्रसिद्ध छ । त्यसको वायव्य दिशामा रत्नवान् पर्वतको तल्लो भागमा रत्न र सुवर्णका बालुवाले युक्त शीला नाम गरेकी नदी पैदा भएकी छन् ॥५५-५६॥

हे अगस्त्य मुनि ! शीला र समुद्रको सङ्गम भएको देवताले पनि पूजित त्यस तीर्थमा जसले स्नान गर्छ, त्यसले के फल पाउँछ, त्यो म बताउँछु । गङ्गा र समुद्रको सङ्गममा रहेको तीर्थमा स्नान गर्नाले प्रशस्त फल प्राप्त हुन्छ । एकपटक मात्रै स्नान गऱ्यो भने पनि करोडौँ गुणा पुण्य उपलब्ध हुन्छ । शीता र समुद्रको सङ्गम भएको तीर्थमा स्नान गर्नाले मानिस सम्पूर्ण मायालाई छोडेर सुवर्णमय विमानमा चढी सधैँ आनन्दै आनन्द भएको शिवजीको परमपदमा पुग्छ ॥५८-६०॥

त्यस तीर्थमा स्नान गर्ने व्यक्तिले अधोगतिमा पुगेका तीन करोड सन्तानलाई त्यस यानमा राखेर रुद्रलोकमा लैजान्छ र त्यहाँ ससम्मान बस्न पाउँछ । ज्योतितीर्थमा स्नान गरी जसले ज्योतिबाट पैदा भएका ज्योतीश्वरको पूजा गर्छ, त्यसको के फल हुन्छ, सुन्नुहोस् । त्यो व्यक्ति सम्पूर्ण जन्मदेखि गर्दै आएका पापबाट तुरुन्त मुक्त हुन्छ । दश हजार सूर्यको जस्तो कान्ति भएको यानमा बसेर रुद्रस्वरूप भएका कन्याद्वारा सुसेवित हुँदै त्यो रुद्रलोकमा जान्छ ॥६१-६३॥

---

२८. याक्ज्जीवो मुने तेषाम् इति न.सं.पु.पाठः ।
२९. स्नातस्तत्र इति न.सं.पु.पाठः ।
३०. तीर्थनाम्ना इति न.सं.पु.पाठः ।
३१. विष्णुना च कृतं पूर्वं योगाभ्यासं सनातनम् इति न.सं.पु.पाठः ।
३२. समुद्भूतो विष्णुतीर्थ इति श्रुतः इति न.सं.पु.पाठः ।
३३. लभेन्नरः इति न.सं.पु.पाठः ।
३४. तत्र ज्योतिषि संभूतं ज्योतीश्वरं प्रपूजति इति न.सं.पु.पाठः ।
३५. रुद्रकन्याप्रसेवितः इति न.सं.पु.पाठः ।

मातृपितृप्रियागोत्र[३६] समुद्धृत्य प्रगच्छति। पिण्डदानेन तत्रैव पितृलोकं मुदा हि सः ॥६४॥
योगार्च्चनञ्च यस्तस्य भक्त्या करोति निश्चितम्। सुदुर्लभं सुरैर्दैत्यैर्निर्वाणं याति विग्रहैः ॥६५॥
तदुत्तरे महातीर्थे हेमशृङ्गादधः क्षितौ। सिद्धाऽभिधां नदीं श्रेष्ठां चाऽसृजत् स विधिः पुरा[३७] ॥६६॥
तयोः सुसङ्गमे तीर्थे लवणाम्भसि कुम्भज। आस्ते ह्यनादिलिङ्गं तद्[३८] ब्रह्मणा सेवितं पुरा ॥६७॥
भक्त्या चाऽऽनादितीर्थे यः स्नानं करोति मानवः। विधूय सर्वपापानि स रुद्रो नाऽत्र संशयः ॥६८॥
सूर्यायुतप्रतीकाशयानेन परमं व्रजेत्। प्रमथैः सेव्यमानोऽसौ सुखभोगसमन्वितः ॥६९॥
सकृदर्चति यो लिङ्गमनाद्याख्यं सुभक्तिभिः। तीर्थे जले समाप्लुत्य तस्य पुण्यफलं शृणु ॥७०॥
शताश्वमेधयज्ञानां फलं प्राप्य नरोत्तमः। अयुतार्काभयानेन रुद्रलोकं स गच्छति ॥७१॥
कल्पकोटिस्थितस्तत्र सेवते रुद्रपादुकाम्। तदन्ते स च मेदिन्यां सार्वभौमः प्रजायते ॥७२॥
तस्य पूर्वोत्तरे भागे हिरण्यसैकता नदी। तस्याञ्च स्नानमात्रेण ब्रह्महत्यां व्यपोहति ॥७३॥
हेमवती च तत्पूर्वं मानसरःसुसम्भवा। तस्याञ्च स्नानमात्रेण कल्पकोटिं वसेद्दिवि ॥७४॥
तज्जलस्पर्शमात्रेण स्थावरो जङ्गमो भवेत्। जङ्गमोऽपि भवद्देवो देवोऽपि मुक्तिमाप्नुयात् ॥७५॥
मत्स्यतीर्थे नरः स्नात्वा कोटिकल्पं वसेद्दिवि। मत्स्यरूपो वसेद्विष्णुः सर्वदेवैः समं तदा ॥७६॥
उद्धर्तुं पृथिवीमेनां हरिर्मत्स्यो बभूव ह[३९]। तस्मात्तन्मत्स्यतीर्थञ्च सर्वतीर्थोत्तमं स्मृतम्[४०] ॥७७॥

---

जसले त्यस तीर्थमा पिण्डदान गर्छ, आमा, बाबु र पत्नीका सम्पूर्ण गोत्रहरूलाई उद्धार गरेर त्यो व्यक्ति आनन्दसित पितृलोक जान्छ। जसले त्यहाँ योगपूर्वक भगवान् शिवको पूजा गर्छ, त्यसले देवता र दैत्यले पनि पाउन नसकिने निर्वाण पदलाई सशरीर प्राप्त गर्छ। त्यसभन्दा उत्तरपट्टि सुवर्णमय शिखरभन्दा तलमा सिद्धामृता नाम गरेकी नदी छन्। तिनलाई अघि ब्रह्माले सृष्टि गर्नुभएको थियो ॥६४–६६॥

ती दुई नदीको सङ्गमस्थल भएको नुनिलो जलमा अनादि लिङ्ग नाम भएका शिवजी हुनुहुन्छ। अघि ब्रह्माले उहाँको आराधना गर्नुभएको थियो। जुन मानिसले अनादि तीर्थमा भक्तिपूर्वक स्नान गर्छ, त्यो व्यक्ति सम्पूर्ण पापबाट मुक्त भएर रुद्र नै हुन्छ, यसमा शङ्का छैन। त्यो व्यक्ति सुखभोग गरी अन्त्यमा दश हजार सूर्यको जस्तो तेज भएको यानमा चढेर प्रमथ आदि गरेका गणहरूद्वारा सुसेवित हुँदै परमपदमा पुग्छ ॥६७–६९॥

जसले अनाद्य नाम गरेको लिङ्गलाई भक्तिपूर्वक पूजा गर्छ र त्यस तीर्थको जलमा स्नान गर्छ त्यसको पुण्यफल म बताउँछु, सुन्नुहोस्। सयवटा अश्वमेध यज्ञ गरेको फल पाएर त्यो मानिस दश हजार सूर्यबराबर तेज भएको यानमा चढेर रुद्रलोक जान्छ अनि त्यहाँ करोडौँ कल्पसम्म बसेर भगवान् शिवजीको चरणसेवा गर्छ र त्यसपछि पृथ्वीमा जन्मिएर चक्रवर्ती राजा हुन्छ ॥७०–७२॥

त्यसको पूर्वपट्टि हिरण्यसैकता नाम गरेकी नदी छन्। त्यहाँ स्नान गर्नाले ब्रह्महत्या नाश हुन्छ ॥७३॥ त्यसभन्दा पूर्वपट्टि मानसरोवरबाट पैदा भएकी हेमवती नाम गरेकी गङ्गा छिन्। ती गङ्गामा स्नान गर्नाले करोडौँ कल्पसम्म स्वर्गमा वास हुन्छ। हेमवती नदीको जल स्पर्श गर्नाले मात्रै पनि स्वर जङ्गम बन्दछन् र जङ्गम देवता बन्दछन्। देवता भएपछि त्यो मोक्षभागी हुन्छ। मत्स्यतीर्थमा स्नान गर्नाले करोडौँ कल्पसम्म मानिस स्वर्गमा बस्न पाउँछ र पछि गएर त्यो व्यक्ति सबै देवताहरूका साथ मत्स्यावता भगवान् विष्णुका रूपमा विराजमान हुन्छ। ॥७६॥ पृथ्वीको उद्धार गर्नका लागि भगवान् विष्णुले मत्स्यको अवतार लिनुभएको थियो। त्यसैले सबैभन्दा उत्तम तीर्थ भएको यस स्थललाई मत्स्यतीर्थ भनिएको हो ॥७३–७७॥

---

३६. मातृपितृप्रियागोत्रान् इति न.सं.पु.पाठः।
३७. सिद्धामृता नदी श्रेष्ठा असृजद् ब्रह्मणा पुरा इति न.सं.पु.पाठः।
३८. अनादिलिङ्गं आस्ते वै इति न.सं.पु.पाठः।
३९. मत्स्यरूपं धृतो विष्णुरुद्धरणाय मेदिनीम् इति न.सं.पु.पाठः।
४०. सर्वतीर्थगरीयसम् इति न.सं.पु.पाठः।

तत्पूर्वे काश्यपं तीर्थं कश्यपस्याऽऽप्लवाच्छ्रुतम्। तत्र स्नात्वा दिवं याति पुत्रपौत्रान्वितो नरः ॥७८॥
तत्पूर्वे ब्रह्मपुत्रे यः स्नानं करोति भक्तिभिः। इहलोकं परित्यज्य ब्रह्मलोकं स गच्छति ॥७९॥
तत्र ब्रह्मेश्वरं लिङ्गं भक्त्याऽर्चति नरोत्तमः। अर्कायुताभयानस्थो रुद्रलोकं स गच्छति ॥८०॥
तत्पूर्वे दक्षिणे भागे रत्नतीर्थजलाप्लवात्। गत्वा स्वर्गं विमानस्थो रत्नगेहे वसेत्सदा ॥८१॥
व्योमकूटसमुद्भूतशिवादेवीजलाप्लवात्। स्नात्वा तस्यां नरो भक्त्या शिवं निर्वाणमाप्नुयात्[४१] ॥८२॥
तद्याम्ये नीलकण्ठाच्च चोत्तरे मुक्तिदा नदी। तस्याञ्च स्नानमात्रेण शिवं मुक्तिञ्च प्राप्नुयात्[४२] ॥८३॥
तस्य पूर्वोत्तरे देशे स्नानं शर्वेण वा कृतम्। शर्वतीर्थे नरः स्नात्त्वा शर्वलोकं प्रगच्छति ॥८४॥
तस्य पूर्वोत्तरे देशे विष्णुमूर्त्तिः प्रतिष्ठति। विशालाचलशृङ्गे वै गणैः सार्द्धं निरन्तरम् ॥८५॥
तच्चतुर्दिक्षु यावन्त्यो जलधाराः प्रनिःसृताः। तावन्त्यः फलदा नद्यस्तासु स्नात्वा दिवं व्रजेत् ॥८६॥
आरुह्य तद्गिरिं भक्त्या पश्यति स्नातकोऽच्युतम्। निष्पापोऽसौ विमानस्थो विष्णुसायुज्यमाप्नुयात् ॥८७॥
तस्य पूर्वोत्तरे स्थाने कामिनी नाम विश्रुता। आर्यामूर्त्तिश्च महती महाशृङ्गे च हे मुने ॥८८॥
तच्छैलान्निःसृता नद्यस्तासां नामानि वच्मि ते। भूतिदा कामदा नित्यं भुक्तिदा मोक्षदा तथा ॥८९॥
तासु स्नात्वा नरः सद्यस्तत् तत् फलं समाप्नुयात्। सर्वयोनिं परित्यज्य चाऽऽर्यालोकं स गच्छति ॥९०॥

---

त्यसभन्दा पूर्वपट्टि कश्यप ऋषिले स्नान गरेको हुँदा काश्यपतीर्थ नामले प्रसिद्ध तीर्थ छ। त्यहाँ स्नान गर्नाले मानिस छोरा-नातिसहितै स्वर्ग जान्छ। त्यसभन्दा पूर्वपट्टि रहेको ब्रह्मपुत्रमा जसले भक्तिपूर्वक स्नान गर्छ, त्यो व्यक्ति यो संसार त्यागेपछि ब्रह्मलोक जान्छ। जुन मासिनले त्यहाँ रहेको ब्रह्मेश्वर लिङ्गको भक्तिपूर्वक पूजा गर्छ, त्यो दश हजार सूर्यको जस्तो कान्ति भएको यानमा चढेर रुद्रलोक जान्छ। त्यसको आग्नेयपट्टि रत्नतीर्थको जलमा स्नान गर्नाले मासिन विमानमा चढेर स्वर्ग गई रत्नमय धाममा सधैँ बस्न पाउँछ ॥७८-८१॥

व्योमकूटबाट पैदा भएकी शिवादेवी नदीको जलमा भक्तिपूर्वक स्नान गर्नाले मानिसले कल्याणमय मुक्ति पाउँछ। त्यसको दक्षिणपट्टि र नीलकण्ठ पर्वतको उत्तरपट्टि मुक्तिदा नाम गरेकी नदी छन्। त्यहाँ स्नान गर्नाले मात्रै पनि मानिसले कल्याणदायक मुक्ति पाउँछ। त्यसको ईशानतिर स्वयम् शिवजीले स्नान गर्नुभएको शर्वतीर्थ छ, त्यसमा स्नान गरेर मानिस शिवलोक प्राप्त गर्छ ॥८२-८४॥

शर्वतीर्थको पूर्वोत्तर क्षेत्रमा रहेको ठूलो पहाडको टुकुरामा विभिन्न गणहरूद्वारा सधैँ सुशोभित विष्णुको मूर्ति छ। त्यस क्षेत्रको चारै दिशाबाट जति जलधारा निस्किएका छन्, ती सबै फलदायक नदीहरू हुन्। त्यहाँ स्नान गर्नाले स्वर्ग प्राप्त हुन्छ। ती नदीहरूमा स्नान गरेर त्यस पहाडमा चढी जसले विष्णुको दर्शन गर्छ त्यो व्यक्ति पापमुक्त भएर विमानमा चढी विष्णुसायुज्य प्राप्त गर्दछ अर्थात् विष्णुमा विलीन हुन्छ। त्यसको पूर्वोत्तर क्षेत्रमा रहेको ठूलो शिखरमा कामिनी नाम गरेको आर्यादेवीको ठूलो मूर्ति छ। त्यसै पहाडबाट निस्किएका ऐश्वर्यदायक, कामना पूर्ण गर्ने, भुक्ति तथा मुक्ति दिने थुप्रै नदीहरू छन्, तिनीहरूको नाम म तिमीलाई भन्छु। ती नदीहरूमा स्नान गर्नाले मानिस तुरुन्तै त्यसको फल पाउँछ, सम्पूर्ण योनिलाई छोडेर त्यो व्यक्ति आर्यादेवीको लोकमा जान्छ ॥८५-९०॥

---

४१. निवार्णं प्रलभेच्छिवम् इति न.सं.पु.पाठः। ४२. मुक्तिं लभेच्छिवा नरः इति न.सं.पु.पाठः।

आरुह्य तद्गिरिं स्नायी चाऽऽर्यामूर्त्तिं प्रपश्यति। देवैः सुदुर्लभं स्थानं निर्वाणं तत्र चाऽऽप्नुयात् ॥९१॥
तत्पूर्वोत्तरदेशे च ज्ञानतीर्थञ्च विद्यते। दैत्येभ्यो वरदानाय दध्रे बुद्धतनुं हरिः[४३] ॥९२॥
पूर्वजातिं स्मरेद्धीरः स्पृष्ट्वा तत्तीर्थजीवनम्[४४]। सर्वपापैर्विनिर्मुक्तो बुद्धलोके महीयते ॥९३॥
तज्जलस्पर्शमात्रेण नरा जन्मनि जन्मनि। कृत्याकृत्यं स्वजातिञ्च संस्मरन्ति च तत्क्षणात् ॥९४॥
तत्पूर्वे च मुनेस्तीर्थं[४५] ह्यासीद् दुर्वाससो वरम्। यत्र देवासुराः शप्तास्तेन पूर्वं घटोद्भव ॥९५॥
तत्र स्नात्वा नरो धीमान् शापैर्विमुच्यते द्रुतम्। सर्वपापैर्विनिर्मुक्तः स याति स्वर्गमुत्तमम् ॥९६॥
तत्पूर्वे दक्षिणे देशे स्वयम्भूतीर्थमुत्तमम्। तत्र स्नात्वा नरः शीघ्रं शपथैः सुविमुच्यते ॥९७॥
तत्पूर्वे चाऽस्ति तीर्थञ्च ऋणमोचननामकम्। तत्र स्नात्वा ऋणैर्मर्त्त्यो मुच्यते चाऽप्यदानतः ॥९८॥
तत्पूर्वे सुप्रभानद्याः सङ्गमेऽब्धेर्नरो मुदा। लक्ष्मीतीर्थे मुने स्नात्वा न दरिद्रो भवेत्सदा ॥९९॥
तद्दक्षिणे शुभानद्याः सङ्गमेऽब्धितटे नरः। स्नात्वा जलेश्वरं लिङ्गं भक्त्याऽर्चति सकृन्मुदा ॥१००॥
जाम्बूनदमये याने संस्थितः पापवर्जितः। कल्पकोटिसमं साग्रं रुद्रलोके वसेत् सुखम् ॥१०१॥
तत्रोत्तरे शचीतीर्थे मङ्गलासिन्धुसङ्गमे। शच्या प्रसेविते मर्त्यः स्नात्वा सौभाग्यमाप्नुयात् ॥१०२॥

---

स्नान गरेर त्यस पर्वतमा चढेर जसले आर्या भगवतीको दर्शन गर्छ, त्यसले देवताका लागि पनि दुर्लभ भएको स्थान र निर्वाण प्राप्त गर्छ। त्यसको पूर्वोत्तर क्षेत्रमा ज्ञानतीर्थ रहेको छ। जहाँ दैत्यहरूलाई वर दिनका लागि भगवान् विष्णुले बुद्धको अवतार लिनुभएको थियो। जसले त्यस तीर्थको पानीलाई छुन्छ, त्यसले आफ्नो पूर्वजन्म सम्झन्छ र सम्पूर्ण पापबाट मुक्त भएर बुद्धको लोकमा ससम्मान बस्न पाउँछ। त्यस तीर्थको जलको स्पर्श गर्नाले मात्रै पनि मानिसहरू प्रत्येक जन्ममा आफूले गरेका राम्रा–नराम्रा कामहरू र आफ्नो जाति अर्थात् दाजुभाइ आदिलाई तुरुन्तै सम्झन सक्छन् ॥९१–९४॥

ज्ञानतीर्थको पूर्वपट्टि मुनितीर्थ छ। त्यहाँ अघि दुर्वासा ऋषि बसेका थिए र देवता तथा दैत्यहरूलाई सराप दिएका थिए। हे अगस्त्य मुनि ! त्यहाँ स्नान गर्नाले मानिस सबै किसिमको सरापबाट तुरुन्तै मुक्त हुन्छ, सम्पूर्ण पापबाट मुक्त भएर त्यस व्यक्तिले उत्तम स्वर्ग प्राप्त गर्छ। त्यसभन्दा दक्षिणपूर्वमा स्वयम्भू नाम गरेको तीर्थ छ। त्यहाँ स्नान गर्‍यो भने स्नान गर्ने मानिस तुरुन्तै शपथबाट मुक्त हुन्छ। त्यसको पनि पूर्वपट्टि ऋणमोचन नाम गरेको तीर्थ छ। त्यस तीर्थमा स्नाना गर्‍यो भने कुनै दान नगरेको भए पनि मानिस पितृऋण, देवऋण आदि ऋणबाट मुक्त हुन्छ। त्यसभन्दा पूर्वपट्टि सुप्रभा नदी र समुद्रको सङ्गममा लक्ष्मीतीर्थ छ। त्यहाँ स्नान गर्नाले मानिस कहिल्यै पनि दरिद्र हुँदैन ॥९५–९९॥

लक्ष्मीतीर्थको दक्षिणपट्टि समुद्र र नदीको सङ्गमस्थलमा स्नान गरेर जसले भक्तिपूर्वक एकपटक मात्रै भए पनि प्रसन्न भएर जलेश्वर लिङ्गको पूजा गर्छ, त्यो व्यक्ति सम्पूर्ण पापबाट मुक्त भएर सुवर्णमय विमानमा चढेर रुद्रलोक गई त्यहाँ करोडौँ कल्पभन्दा पनि बढी समयसम्म आनन्दसाथ बस्न पाउँछ। त्यसको उत्तरतर्फ मङ्गला नदी र समुद्रको सङ्गममा शचीतीर्थ छ, इन्द्राणीले समेत सेवा गरिएको त्यस तीर्थमा स्नान गर्नाले मानिस सौभाग्यशाली बन्छ ॥१००–१०२॥

---

४३. बुद्धतनुं धृतो हरिः इति न.सं.पु.पाठः।
४४. तत्तीर्थजीवनस्पृशात् इति न.सं.पु.पाठः।
४५. मुनितीर्थञ्च इति न.सं.पु.पाठः।

आख्यातमेतत् सरितां महत्त्व[४६] तीर्थप्रशंसा विहिता मया च[४७] ।
श्रृण्वन्ति भक्त्या हि विधूतपापाः प्राप्स्यन्ति पुण्यञ्च यदुक्तसर्वम् ॥१०३॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे बहुतीर्थाभिधानं नाम द्विषष्टितमोऽध्यायः ॥६२॥

---

हे अगस्त्य मुनि ! मैले तपाईंलाई तीर्थहरूको सम्पूर्ण माहात्म्य सुनाएँ। यो माहात्म्य जुन मानिसले भक्तिपूर्वक सुन्छन्, तिनीहरूले सम्पूर्ण पापबाट मुक्त भएर माथि भनिएको सबै पुण्य प्राप्त गर्छन् ॥१०३॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा अनेक प्रकारका तीर्थको नामकथननामक बैसट्ठियौं अध्याय पूर्ण भयो।

पराम्बा वाग्वादिनी भगवतीको असीम अनुकम्पाबाट पोरकनी पाल्पा निवासी पतिव्रताशिरोमणि स्वर्गीय मातश्री दिव्यलक्ष्मी ढकाल र सज्जनमुकुटमणि स्वर्गीय पिताश्री चूडामणि ढकालका कनिष्ठ पुत्र नेपाल संस्कृत विश्वविद्यालय सेवा आयोगका अध्यक्ष प्रा. डा. वेणीमाधव ढकालद्वारा गरिएको महर्षि वेदव्यासरचित स्कन्दमहापुराणअन्तर्गत हिमवत्खण्डको अभिनव सम्पादन एवं नरहरिनामक नेपाली भाषानुवादमा कामाख्या-कौशिकी-गण्डकी प्रकरण पूरा भयो।

---

४६. एतां सामाख्यां महिमां मया ते इति न.सं.पु.पाठः।

४७. तीर्थप्रशंसां सकलां मुने ये इति न.सं.पु.पाठः।

# हिमवत्खण्ड

## (नेपाली अनुवादसहित मूलपाठ)

## प्रकरण- ४

## नेपालमाहात्म्य प्रकरण

(अध्याय ६३ - ८९)

द्वीपानाञ्चैव सप्तानां जम्बूद्वीपो महत्तमः। तस्मिँश्चैव गरिष्ठञ्च वाराणसीस्थलं महत् ॥६०॥
तस्माच्चतुर्गुणं ज्ञेयं श्रेष्ठक्षेत्रञ्च कामदम्। भुक्तिमुक्तिप्रदं साक्षात्पशुपतिस्थलं महत् ॥६१॥
नित्यं पशुपतिं पुत्र समभ्यर्च्य सुभक्तितः। स्थित्वा तत्रैव सम्यक् त्वमेतत्क्षेत्रं प्ररक्षय ॥६२॥
ततः कालान्तरे भूयः तत्क्षेत्रं बहुवत्सरम्। वाग्वतीजलसम्पूर्णं नदीभूतं भविष्यति ॥६३॥
देव्याश्चाऽऽज्ञां समादाय लब्धलाभश्च नेमुनिः। धर्मेणाऽपालयत् क्षेत्रं पाशुपतं हि सन्ततम् ॥६४॥
लोकान् प्रबोधयन् सम्यक् नियमञ्च विबोधयन्। व्रतोपवासपूजाभिः क्षेत्रमरक्षयन्मुनिः ॥६५॥
ततो हि नेपाल इति प्रतिष्ठा देवासुरैश्चाऽपि हि सर्वलोकैः।
देव्याः प्रसादाद् वरमाप्य तेन ने-नामकेनैव तपोविधानात् ॥६६॥

(हिमवत्खण्ड, प्रकरण - ४, अध्याय - ६९, श्लोक - ६०-६६)

## अर्थ-

सात द्वीपहरूमध्ये जम्बूद्वीप सबैभन्दा उत्तम मानिन्छ। त्यस पनि वाराणसी क्षेत्र अझै उत्तम छ। त्यसभन्दा पनि चार गुणा श्रेष्ठ नेपालक्षेत्र छ। साक्षात् पशुपतिको स्थल भएको र सबै कामना पूर्ण गर्ने यस क्षेत्रले मानिसहरूलाई इच्छाअनुसारको भुक्ति र मुक्ति दिन्छ। हे छोरा ! तिमी सधैँ त्यहाँ बसेर भक्तिपूर्वक पशुपतिको पूजा गरी यस क्षेत्रको रक्षा गर। धेरै वर्ष बितेपछि त्यहाँ जलले परिपूर्ण भएकी वाग्वती नाम गरेकी नदीको प्रादुर्भाव हुनेछ ॥६०-६३॥

त्यसपछि देवीबाट वर प्राप्त गरेर उहाँको आज्ञा अनुसार नेमुनिले पशुपति क्षेत्रलाई धर्मपूर्वक निरन्तर पालना गरे। मानिसहरूलाई सम्झाई-बुझाई धर्मका नियमहरू बताउँदै व्रत, उपवास, पूजा आदिद्वारा नेमुनिले त्यस क्षेत्रको रक्षा गरे। त्यसपछि देवता, असुर तथा मानिसले नेपालको निकै प्रतिष्ठा गरे। देवीको प्रसादबाट वरदान पाएका जितेन्द्रिय नेमुनिले तपस्या गरेको हुँदा यस क्षेत्रलाई नेपाल भनियो ॥६४-६६॥

# त्रिषष्टितमोऽध्यायः

मुनितीर्थमहिमा दुर्वाससोऽभिशापप्रसङ्गश्च

अगस्त्य उवाच

भगवन् देवदैत्यानां प्रीतिरासीत्[1] परस्परम् । अत्यन्तञ्च पुनर्वैरं चाऽभूदुक्तं पुनस्त्वया[2] ॥१॥

सुरासुराः कथं शप्ताः[3] दुर्वाससा महर्षिणा । दान्तचित्तोऽसि धीरोऽसि[4] चैतच्चित्रं वद प्रभो ॥२॥

स्कन्द उवाच

ब्रह्मपुत्रनदश्रेष्ठतीरे तप्तं महत्तपः[5] । दुर्वाससा पुरा धीर हिमवदुत्तरे तटे ॥३॥

यदृच्छया समायाताः सप्ताऽप्सरोगणास्तदा । तत्र स्नातुं मुदा स्वर्गात्समादाय समर्हणम् ॥४॥

ददृशुस्ताश्च तं तत्र ध्यानमग्नं मुनिं पुनः । अत्यन्तं बिभयाञ्चक्रुः पूर्वशापविचारतः[6] ॥५॥

भयेन वेपमानास्ताः पूर्वशापस्य कारणात्[7] । रम्भा व्याचष्ट शीघ्रञ्च सखीभ्यो भयविह्वला ॥६॥

रम्भोवाच

सख्यः किं स्मर्यतेऽस्माभिः शापो प्राप्तोऽधुनाऽशिवः[8] । यतो भृशं मुनेः शापः गण्डक्याश्च तटे पुरा ॥७॥

येनैव मुनिना शप्ता वयं भृशमनादरात्[9] । सैष मुनिवरोऽयं वै ज्ञायतां च सुनिश्चितम् ॥८॥

भूयो ददाति शापं नो हेलया स न संशयः । अर्चनमस्य कुर्याम [९क] पूजां येन तुष्यति साम्प्रतम् ॥९॥

---

अध्याय – ६३

मुनितीर्थको महिमा दुर्वासाका अभिशापको प्रसङ्ग

अगस्त्य मुनिले भन्नुभयो– हे कार्तिक स्वामी ! देवता र दैत्यहरूको बीचमा पहिले परस्पर प्रेमभाव थियो, पछि अत्यन्तवैरभाव पैदा भयो भनेर तपाईंले मलाई बताउनुभयो । फेरि उदार चित्त भएका दुर्वासा ऋषिले देवता र दैत्यहरूलाई किन सराप दिनुभयो ? अचम्म लागेको छ । हे प्रभु ! यो कुरा मलाई बताउनुहोस् ॥१–२॥

कार्तिक स्वामीले भन्नुभयो – हिमालयको उत्तरमा पर्ने ब्रह्मपुत्र नदीको उत्तम तीरमा अघि दुर्वासा ऋषिले तपस्या गर्नुभएको थियो । त्यस ठाउँमा पूजासामग्री लिएर स्नान गर्नका लागि स्वर्गबाट प्रसन्न हुँदै सातवटी अप्सराहरू आफूखुसी आएका थिए । तिनीहरूले ध्यान गर्न लागेका ती ऋषिलाई त्यहाँ देखे । पहिले दिएको सराप सम्झिएर उनीहरू अत्यन्त डराए । पहिलेको सरापको सम्झनाले गर्दा सबै अप्सराहरू काँप्न थाले । त्यसपछि डरले आत्तिएकी रम्भाले तुरुन्त आफ्ना सखीहरूलाई भनिन् ॥३–६॥

रम्भाले भनिन् – हे सखी हो ! तिमीहरूले पहिलेको कुरा सम्झिएकै हौला, जुन हामी आज भोग्दैछौँ, त्यतिखेर गण्डकीको तीरमा बसेर सराप दिने भयङ्कर ऋषि यिनै हुन् । जुन ऋषिले हामीले गरेका अपमानका कारणले हामीलाई सराप दिएका थिए, ती मुनि पक्का यिनै हुन् भन्ने ठाने । हामीलाई सजिलैसित फेरि पनि यिनले सराप दिनेछन्, यसमा कुनै शङ्का छैन । त्यसैले अब हामी यिनको पूजा गरौँ, त्यसो गरेमा यी खुसी हुनेछन् ॥७–९॥

---

१. प्रियश्चाभूत् इति न.सं.पु.पाठः ।
२. भवेत्त्वयोक्तमार्य मे इति न.सं.पु.पाठः ।
३. सुरासरं कथं शप्तम् इति न.सं.पु.पाठः ।
४. दान्तचित्तेन धीरेण इति न.सं.पु.पाठः ।
५. चासीद्धि तप्तवान् इति न.सं.पु.पाठः ।
६. पूर्वशापं सुचिन्तयन् इति न.सं.पु.पाठः ।
७. भयेन वेविताः सर्वाः पूर्वशापस्य निर्भरम् इति न.सं.पु.पाठः ।
८. हे सख्यस्तत्स्मृतास्थार्या अस्माभिः प्राप्तमद्य तत्, इति न.सं.पु.पाठः ।
९. शप्तं नश्चावमानतो भृशम् इति न.सं.पु.पाठः ।
९क. अस्य कुर्वामहे पूजाम्, इति न.सं.पु.पाठः ।

स्कन्द उवाच

एवं कृत्वा मिथो धीर सम्मतिं चाऽप्सरोगणाः। स्नात्वा तत्र ययुर्भक्त्या पूजाहस्ताः तदन्तिके ॥१०॥
प्रणम्य विधिवद् भक्त्या ह्यपूपुजन्[१०] मुनिं तदा। पारिजातस्य गन्धैस्तं बद्धाञ्जल्यश्च श्रद्धया[११] ॥११॥
ततः सन्तुष्टवान् योगी प्रेक्ष्य पूजनसत्कृती। इत्याशिषो ददौ ताभ्यः सौभाग्यिन्यो भवन्तु वै ॥१२॥
लब्ध्वाऽऽशिषो ययुः स्वर्गं सहर्षं चाऽप्सरोगणाः। दुर्वाससोऽनुशिष्टं वै समादाय मुदाऽन्विताः ॥१३॥
ततश्च समये तस्मिन् देवासुराः समाययुः। ब्रह्मपुत्रनदे स्नातुं शक्रपुरोगमा मुदा ॥१४॥
सस्नुस्तत्र सहर्षन्ते पूजां चक्रुः शिवस्य वै[१२]। हिरण्यकशिपुः शक्रो मिथः प्रीत्या प्रतस्थतुः ॥१५॥
ददृशुस्तञ्च तत्तीरे देवासुरास्तपस्विनम्। दुर्वाससं विदूराद्वै ध्यायन्तं[१३] तं सुनिश्चलम् ॥१६॥
ऐरावतं समारुह्य शक्रो देवैः सहाऽऽययौ। हिरण्यकशिपुर्दैत्यैः सह यानेन सत्त्वरम् ॥१७॥
स्नात्वा च ऋषितीर्थे ते भूयो मुने विदूरतः। प्रचक्रिरे जलक्रीडां सम्भूय वै परस्परम् ॥१८॥
दुर्वासाश्च ततो धीर स्वयं त्वचिन्तयद्धृदि। शक्रयोग्यमिदं पुष्पं तस्मै ददामि तुष्यति ॥१९॥
एवं सुचिन्त्य दुर्वासा आदाय कुसुमञ्च तत्। तदा देवासुराणाञ्च प्रत्युद्ययौ समन्तिकम् ॥२०॥
नमस्वक्रु[१४]र्मुनिश्रेष्ठं भक्तिपूर्वं सुरासुराः। प्रबद्धाञ्जलयो भक्त्या स्तुतिभिश्च परिक्रमैः[१५] ॥२१॥
हस्तेनादाय दुर्वासाश्चाऽपूर्वकुसुमं मुदा[१६]। पारिजातमिति कृत्वा[१७] प्रीत्या शक्राय स ददौ ॥२२॥

---

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! अप्सराहरूले परस्पर सल्लाह गरेर स्नान गरी पूजासामग्री हातमा लिएर भक्तिपूर्वक उनैका नजिक गए। त्यसपछि उनीहरूले पारिजातको फूल र चन्दनले ती ऋषिलाई भक्तिका साथ विधिवत् पूजा गरे, हात जोडेर परिक्रमा गरे। त्यसपछि उनीहरूले गरेको पूजा र सत्कारलाई देखेर दुर्वासा मुनि प्रसन्न भए, उनले तिनीहरूलाई सौभाग्यवती भए भन्ने आशीर्वाद दिए। अप्सराहरू दुर्वासाले दिएको आशीर्वाद र उपदेश पाएर प्रसन्न हुँदै सहर्ष स्वर्ग गए। अनि त्यसै समयमा हर्षित हुँदै इन्द्रलाई अगाडि लगाएर देवता र राक्षसहरू स्नान गर्न त्यस ब्रह्मपुत्र नदीमा आए ॥१०–१४॥

त्यस ब्रह्मपुत्र नदीमा सबै देवता र राक्षसहरूले मिलेर सहर्ष स्नान गरे, महेश्वरको पूजा गरे। त्यतिखेर हिरण्यकशिपु र इन्द्र परस्पर प्रेमले रहेका थिए। त्यसपछि त्यसै नदीको तीरमा निश्चल भएर भगवान्‌को ध्यान गर्न लागेका तपस्वी ती दुर्वासा मुनिलाई देवता र राक्षसहरूले टाढैबाट देखे। ऐरावत हात्तीमा चढेर देवताहरूलाई साथ लिई इन्द्र त्यहाँ आए। दैत्यहरूलाई साथमा लिएर यानमा चढी हिरण्यकशिपु पनि तुरुन्तै त्यहाँ पुगे ॥१५–१७॥

हे अगस्त्य मुनि ! त्यस ऋषितीर्थमा तिनीहरूले स्नान गरे र टाढै बसेर परस्पर मिली जलक्रीडा गरे। हे अगस्त्य मुनि ! दुर्वासा ऋषिले मनमनै इन्द्रका लागि उपयुक्त भएको फूल उनलाई दिन्छु भनेर विचार गरे। यस्तो सोचेर त्यो फूल लिई दुर्वासा ऋषि देवता र राक्षसहरूको नजिकै गए। देवता र राक्षसहरूले हात जोडेर मुनिश्रेष्ठ दुर्वासालाई भक्तिपूर्वक नमस्कार गरे र परिक्रमा गरी स्तुति गरे। ती दुर्वासा ऋषिले यो अपूर्व फूल पारिजातको हो भनेर इन्द्रलाई प्रेमपूर्वक दायाँ हातले दिए ॥१८–२२॥

---

१०. पूजन्ति स्म इति न.सं.पु.पाठः।
११. पारिजातेन गन्धैस्तं बद्धाञ्जल्यः परिक्रमन् इति न.सं.पु.पाठः।
१२. चक्रुर्महेश्वरम् इति न.सं.पु.पाठः।
१३. ध्यायमानम् इति न.सं.पु.पाठः।
१४. ववन्दुस्ते इति न.सं.पु.पाठः।
१५. स्तोत्रयैश्च परिक्रमन् इति न.सं.पु.पाठः।
१६. दुर्वासादाय हस्तेन चापूवकुसुमं मुदा इति न.सं.पु.पाठः।
१७. पारिजातो हि कृत्वेति इति न.सं.पु.पाठः।

कौतुकेन तदादाय सुचिरं[१८] प्रेक्ष्य साम्प्रतम्। शक्रोऽपि हेलया युक्तश्चिक्षेपैरावतोपरि ॥२३॥
अपतद् भुवि तत्पुष्पं समक्षञ्च दिवौकसाम्। ऐरावतोऽपि तच्छीघ्रं पादेनामर्दयत्तदा ॥२४॥
स्मितेन चक्रिरे हास्यं देवासुराः परस्परम्। किं दत्तं मुनिना तस्मै ह्यपूर्वमित्यचिन्तयन्[१८क] ॥२५॥
ततस्तत्राऽऽशु दुर्वासा लज्जाविष्टोऽभवत्तदा। क्रोधेन मूर्च्छितो विप्र शापं दातुं प्रचक्रिरे ॥२६॥

दुर्वासा उवाच

रे रे शक्र महामानिन् श्रीमदान्धो हि निश्चितम्। मां हेलयसि मूढाद्य किमागस्तद्[१९] वदाऽऽशु मे ॥२७॥
श्रीमदान्धेन ये मूढा हेलयन्ति तपस्विनम्। महान्तं वा द्विजं वा ते पतिष्यन्ति न संशयः ॥२८॥
मया दत्तं प्रसूनन्ते हार्देनैव समादरात्[१९]। चूर्णितं दर्शयँल्लोकांस्तद्धेलया द्विपाङ्घ्रिणा ॥२९॥
अतो मद्धेलया[२०] शक्रो भ्रष्टराज्यो भविष्यतु। देवासुरविरोधेन स्थानभ्रष्टः पुनः पुनः ॥३०॥
यतो माञ्चाऽवमन्याद्य यूयं हास्यरता रह[२१]। तस्मात्सम्भूय युष्माकं विरोधश्च[२२] भविष्यतु ॥३१॥
देवासुरा महावैरं युष्माकं स्यात् परस्परम्[२३]। हन्तारश्च मिथो यूयं भवेयुर्हास्यकारणात्[२४] ॥३२॥

स्कन्द उवाच

दत्त्वा शापं ततस्तेभ्यो दुर्वासा मुनिपुङ्गवः। प्रययौ कौशिकीतीरे तप्तुं शीघ्रं घटोद्भव ॥३३॥
ततः शक्रादयो देवा हिरण्यकशिपोर्गणाः। श्रुत्वा शापं मुनेस्तीक्ष्णं बभूवुर्नम्रमस्तकाः ॥३४॥

---

आश्चर्य मानेर देवता र दैत्यहरूले त्यस फूललाई निकैबेर हेरे। इन्द्रले हेला गरेर त्यो फूल ऐरावत हात्तीमाथि फ्याँके। त्यो फूल देवताहरूको अगाडि नै भुईँमा खस्यो। ऐरावत हात्तीले तुरुन्त त्यस फूललाई खुट्टाले कुल्चियो। ऋषिले त्यस्तो के अपूर्व वस्तु दिएछन् र भन्ने सोचेर देवता र राक्षसहरूले आपसमा मुस्कान गरे। हे अगस्त्य मुनि! त्यसपछि त्यहाँ रहेका दुर्वासा तुरुन्त लज्जित भए र रीसले मूर्च्छा परेर सराप दिन तयार भए ॥२३-२६॥

दुर्वासाले भने - हे अभिमानी इन्द्र! तैं सम्पत्तिको मदले अन्ध भइछस्, हे मूर्ख! मेरो अपमान गरिस्, मेरो के अपराध थियो, तुरुन्त भन्। सम्पत्तिले अन्धा भएका जुन मूर्खहरूले तपस्वी, ठूलाबडा अथवा ब्राह्मणको अपमान गर्छन्, ती व्यक्तिहरूको अधपतन हुन्छ, यसमा शङ्का छैन। मैले सम्मानका साथ हृदयदेखि नै प्रेम गरेर यो फूल दिएँ। दुनियाँलाई देखाउँदै अपमान गरेर हात्तीको पाउद्वारा त्यस फूललाई चूर्ण गरिस्। हे इन्द्र! यसरी मलाई हेला गरेको हुनाले तैं राज्यबाट पतित बन्नेछस्, देवता र राक्षसहरूको झगडा परेर बारम्बार तैंले आफ्नो स्थानबाट भ्रष्ट हुनुपरोस्। हे देवता तथा राक्षस हो! तिमीहरू मिलेर मलाई अपमान गर्दै आज जुन हाँसो गऱ्यौ, तिमीहरूको भविष्यमा सधैं विरोध हओस्, तिमीहरूको सधैं परस्पर ठूलो वैरभाव बढोस्, तिमीहरू सधैं परस्परमा मारामार गर्ने वैरी बन ॥२७-३२॥

कार्तिक स्वामीले भन्नुभयो - हे अगस्त्य मुनि! त्यसपछि तिनीहरूलाई सराप दिएर मुनिश्रेष्ठ दुर्वासा ऋषि तपस्या गर्न कोशी नदीको किनारमा तुरुन्त गए। ऋषले सराप दिएको सुनेर इन्द्र आदि गरेका देवता र हिरण्यकशिपु आदि गरेका राक्षसहरूले निहुरिमुन्टो लगाए ॥३३-३४॥

---

१८. तमादाय वहुत्वात्, इति न.सं.पु.पाठः।
१८क. अपूर्वमिति चिन्तयन् इति न.सं.पु.पाठः।
१९. किमागसम् इति न.सं.पु.पाठः।
२०. च मान्यत इति न.सं.पु.पाठः।
२१. तस्मान्मां हेलया इति न.सं.पु.पाठः।
२२. हास्यं कृताश्च मे इति न.सं.पु.पाठः।
२३. विरुद्धञ्च इति न.सं.पु.पाठः।
२४. परस्परं महावैरं भूयाद्देवासुराश्च व इति न.सं.पु.पाठः।
२५. हेतो यूयं भूयास्थ सर्वदा इति न.सं.पु.पाठः।

त्रसन्तस्ते समाकर्ण्य[२६] मुनेः शापं रुषोद्भवम् । स्वं स्वं स्थानं ययुस्ते हि शापकालप्रचोदिताः ॥३५॥
मृते चैरावते नष्टा[२७] राज्यलक्ष्मीः सवाहना । ततो देवासुरास्तेऽपि पुनर्वैरं प्रचक्रिरे[२८] ॥३६॥
समुद्रमथने लब्धा देवी लक्ष्मीः[२९] सवाहना । सुधायै च[३०] महायुद्धमभूत्तेषां परस्परम् ॥३७॥
ततो वैरमभूत्तीव्रञ्चाऽन्योन्यमीर्ष्यया मुने । देवानाञ्चाऽसुराणाञ्च दुर्वासःशापसम्भवम् ॥३८॥
तदादि चाऽद्याप्यभवच्च वैरं परस्परं निर्भरमार्य तेषाम् ।
क्षणं न स्वास्थ्यं सुरपेन लब्धं स्वपत्तने वै मुनिशापवैरात् ॥३९॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे मुनितीर्थमाहात्म्ये दुर्वासःशापो नाम त्रिषष्टितमोऽध्यायः ॥६३॥

---

दुर्वासाले रीसले दिएको डरलाग्दो त्यो सराप सुनेर देवताहरू डराउँदै आ–आफ्ना स्थानमा गए । सराप परेको हुनाले ऐरावत हात्ती मऱ्यो, देवता र दानवका अरू वाहनका साथै राज्यलक्ष्मी नष्ट भयो । त्यसपछि उनीहरू मिलेर फेरि उद्योग गर्न थाले । समुद्रमथन गर्दा उनीहरूले सम्पूर्ण सम्पत्ति, लक्ष्मी र वाहन पाए । अमृत प्राप्त भएपछि तिनीहरूको बीचमा ठूलो लडाईं भयो । त्यसपछि दुर्वासाको सरापले गर्दा परस्पर बढ्दै गएको तीव्र ईर्ष्याको कारण देवता र राक्षसहरूको वैरभाव झन् बढ्यो ॥३३–३८॥

हे अगस्त्य मुनि ! त्यसै समयदेखि आजसम्म पनि तिनीहरूको परस्पर वैरभाव जारी नै छ । दुर्वासाको सरापले गर्दा एकछिन पनि आफ्नो शहरमा बसेर सुस्ताउन इन्द्रले पाएका छैनन् ॥३९॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा मुनितीर्थको माहात्म्यमा देवता र दानवलाई ऋषि दुर्वासाको श्रापनामक त्रिसट्ठियौं अध्याय पूर्ण भयो ।

---

२६. त्रस्तमानास्तमाकर्ण्य इति न.सं.पु.पाठः ।
२७. मृतश्चैरावते नष्टे इति न.सं.पु.पाठः ।
२८. ततो देवासुराणां ते पुनः कर्तुं प्रचक्रिरे इति न.सं.पु.पाठः ।
२९. सर्वलक्ष्मी इति न.सं.पु.पाठः ।
३०. सुधालब्धे इति न.सं.पु.पाठः ।

# चतुःषष्टितमोऽध्यायः

## भगवतो बुद्धस्यावतारकथा

### अगस्त्य उवाच

कदा बुद्धावतारञ्च धृतवान् विष्णुरव्ययः। किमकुर्वन् सुराः स्कन्द कस्मादवततार वै ॥१॥
येन विध्वंसिताः पूर्वं वरोन्मत्ताश्च दानवाः। भूयस्तेभ्यः कथं दत्तो वरश्च[1] विष्णुना विभो ॥२॥
भूयश्च श्रोतुमिच्छामि विष्णोश्चरित्रमुत्तमम्। पीत्वा मधुरवाणीं ते नापि सन्तुष्टवानहम् ॥३॥

### स्कन्द उवाच

अहो धन्यतमं ज्ञानं प्रोद्भूतं तव कुम्भज। श्रोतुं च तां[2] कथां दिव्यां प्रकाशवान्मनोऽम्बरे ॥४॥
पातालं सङ्गता[3] दैत्याः बलिना सह ये पुरा[4]। विध्वस्ताश्च सुरैः[5] पूर्वं मन्त्रणां चक्रिरे मिथः ॥५॥
भूयो योद्धुं सुरैःसार्द्धं स्वर्गस्थानाय चिन्तिताः। पराभवञ्च संस्मृत्य विष्णोर्बलसमुद्भवम्[6] ॥६॥
व्याचष्ट च बलिस्तेभ्यः सभामध्ये व्यवस्थितः। हिताय सर्वदैत्यानां विष्णोराराधनाय च ॥७॥

### बलिरुवाच

भो भो दैत्या महावीरास्तपस्तप्तुं समुद्यताः। शृणुध्वं वचनं मेऽद्य नः शिवाय तदुच्यते ॥८॥
येन विध्वंसिताः पूर्वमिह चाऽभिद्रुता वयम्। अस्माकं खण्डिता[7] देहा येन स्वचक्रनेमिना ॥९॥
तमेवाराधयामो नस्ततो जयो भविष्यति। मनोवाञ्छावरं दैत्या अवश्यमेव दास्यति ॥१०॥

---

## अध्याय – ६४

### भगवान् बुद्धको अवतारसम्बन्धी कथा

अगस्त्य मुनिले भन्नुभयो – अविनाशी भगवान् विष्णले कहिले बुद्धको अवतार लिनुभयो ? देवताहरूले के गरे र भगवान्ले त्यो अवतार लिनुपर्‍यो ?। पहिले वरबाट उन्मत्त भएका दानवहरूले के– के विध्वंस गरे ? हे प्रभु ! विष्णुले तिनीहरूलाई कसरी वर दिनुभयो ?। म फेरि पनि भगवान् विष्णुको उत्तम चरित्र सुन्न चाहन्छु, हजुरको मीठो वचनामृत पान गरेर म सन्तुष्ट भएको छैन ॥१–३॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! तिमी धन्य छौ, तिम्रो हृदयरूपी आकाशमा दिव्यकथा सुन्नका लागि उज्यालो ज्ञान पैदा भएको छ । बलिका साथमा जुन दैत्यहरू पाताल गएका थिए, तिनीहरूले परस्पर सल्लाह गरेर त्यहाँ ठूलो विध्वंस मच्चाए। त्यसपछि विष्णुबाट भएको आफ्नो हार र सेनाको नाशलाई सम्झँदै स्वर्गप्राप्तिका लागि देवताहरूसँग फेरि लड्ने उनीहरूले विचार गरे। सभामा बसेका बलिले सम्बोधन गर्दै दैत्यहरूको हितका लागि विष्णुको आराधना गर्न उनीहरूलाई भने ॥४–७॥

बलिले भने – हे महाबली दैत्य हो ! तिमीहरू तपस्या गर्नका लागि तयार भएका छौ, मेरो वचन सुन । हामीहरूको कल्याणका लागि म केही कुरा भन्छु। पहिले जुन भगवान्ले हामीलाई यस ठाउँमा ल्याए, उनै भगवान्को चक्रको धारले हाम्रो शरीर टुक्रा–टुक्रा भयो। हे दैत्य हो ! हामी उनैको आराधना गरौं, त्यसैबाट हाम्रो विजय हुनेछ, उहाँले हामीलाई इच्छा लागेको वर अवश्य दिनुहुनेछ ॥८–१०॥

---

१. दत्तं वराणि इति न.सं.पु.पाठः।
२. श्रवणाय इति न.सं.पु.पाठः।
३. ये गता इति न.सं.पु.पाठः।
४. सम्पुरा इति न.सं.पु.पाठः।
५. ते च विध्वंसिता इति न.सं.पु.पाठः।
६. विष्णोर्बलप्रमर्दितम् इति न.सं.पु.पाठः।
७. नः शकलीकृता इति न.सं.पु.पाठः।

दैत्या ऊचुः

साधु बले महाराज यदुक्तञ्च त्वयाऽधुना। अस्माकं पथ्यमार्योक्तं सत्यमेतन्न संशयः ॥११॥
भविष्यति जयो नो वै तमाराध्य यदि प्रभो। तमेवाराधयामो हि वचनात्ते[८] न संशयः ॥१२॥
पुरा श्रुतं प्रभोऽस्माभिः तन्माहात्म्यं हि नारदात्। यथारुद्रस्तथा विष्णुर्नास्ति भेदस्तयोः सदा ॥१३॥

मुचुकुन्द उवाच

सत्योक्तञ्च भवद्‌भिर्नो हिताय चाऽधुना प्रभो। एवमेव च कर्त्तव्यं नाऽन्यथा कार्य्यमुत्सहे ॥१४॥
गच्छत[९] त्वरितं दैत्याः कर्त्तव्यञ्चैव माचिरम्। हिमवदुत्तरे देशे ज्ञानतीर्थे तमर्च्चितुम् ॥१५॥

स्कन्द उवाच

एवञ्च सम्मतिं कृत्वा पाताले सर्वदानवाः। पुरोधाय बलिं शीघ्रं द्रुतं[१०] जग्मुर्महीतलम् ॥१६॥
हिमवदुत्तरे शृङ्गे[११] तपः कर्त्तुं मुदाऽन्विताः। ज्ञानतीर्थे च ते सस्नुः स्वर्गराज्यार्थिनोऽसुराः ॥१७॥
भाद्रशुक्लदशम्याञ्च सङ्कल्प्य विधिवन्मुदा। शुक्रेणोक्तं यथावाक्यं कृत्वा सस्नुश्च ते ततः ॥१८॥
तेपिरे दानवास्तीव्रं कठोरं महदद्‌भुतम्। विष्णुमेव समाराध्य त्रिविधाभिश्च भक्तिभिः[१२] ॥१९॥
केचिद्धूम्राशना धीर केचिज्जलाशनास्तथा। केचित्फलाशना नित्यं केचिन्मूलाशनाः पुनः ॥२०॥
वायुभक्ष्यास्तथा केचित्तृणभक्ष्यास्तथा परे। दर्भाशनास्तथा केचित् पांसुग्रासाश्च केचन[१३] ॥२१॥
पद्मकूर्मासना ऊर्ध्वबाहवश्चाऽपि केचन[१४]। स्तम्भकार्यरता केचिदधोमुखास्तथापरे[१५] ॥२२॥

---

दैत्यहरूले भने – हे महाराज बलि ! अहिले तपाईंले जुन कुरा भन्नुभयो, हाम्रो हितकारक बोली बोल्नुभयो, यो सत्य छ, यसमा शङ्का छैन। हे प्रभु ! यदि हामीले उनलाई आराधना गर्‍यौं भने हाम्रो जय अवश्य हुनेछ, हजुरको भनाइअनुसार हामी उहाँकै आराधना गर्छौं, यसमा सन्देह छैन। जस्तो रुद्र हुनुहुन्छ, उस्तै विष्णु हुनुहुन्छ, ती दुईमा कुनै भेद छैन भन्ने उहाँको माहात्म्य नारदको मुखबाट हामीले अघि सुनेका छौं ॥११–१३॥

मुचुकुन्दले भन्यो – हे प्रभु ! तपाईंले हाम्रो हितका निमित्त साँच्चै कुरा भन्नुभएको छ, हामीले अहिले यसै गर्नुपर्छ, अन्यथा हामी गर्दैनौं। हे दैत्य हो ! हिमालय पर्वतको उत्तरपट्टिको क्षेत्रमा पर्ने ज्ञानतीर्थमा उहाँलाई पूजा गर्न तुरुन्त जाऔं, ढिलो नगरौं ॥१४–१५॥

कार्तिक स्वामीले भन्नुभयो – पातालमा रहेका सबै दानवहरू यस्तो सल्लाह गरेर बलिलाई अगाडि लगाउँदै तुरुन्त पृथ्वीतिर हिँडे। स्वर्गको राज्य प्राप्तिका लागि राक्षसहरूले खुसी हुँदै हिमालयको उत्तरपट्टि रहेको शिखरमा तपस्या गर्न ज्ञानतीर्थमा स्नान गरे। शुक्रले भने अनुसार भाद्र शुक्ल दशमीका दिन उनीहरूले विधिवत् सङ्कल्प गरेर प्रसन्न हुँदै स्नान गरे। तीनै किसिमका भक्तिहरूको प्रयोग गरेर विष्णुको आराधना गरी दानवहरूले अत्यन्त कठोर किसिमको आश्चर्यजनक तपस्या गरे ॥१६–१९॥

हे अगस्त्य मुनि ! तिनीहरूमध्ये कसैले धुँवा मात्रै खायो भने कसैले पानी मात्रै खाए, कसैले फलफूल खाए भने कसैले फेरि कन्दमूल खाए। कसैले वायुमात्र खाए, त्यस्तै कसैले घाँस खाए भने कसैले कुशको पानी खाए। कसैले एकचोटि एकमुठी धूलो खाएर तपस्या गरे। कोही पद्मासनमा बसे भने कोही कूर्मासनमा बसे। कसैले ठाडा हात लगाएर तपस्या गरे भने कसैले खाँबोजस्ते भएर तपस्या गरे। अरू केहीले निहुरीमुन्टी लगाएर तपस्या गरे ॥२०–२२॥

---

८. च त्वद्वचनाच्च इति न.सं.पु.पाठः।
९. गच्छध्वम् इति न.सं.पु.पाठः।
१०. तेभ्य इति न.सं.पु.पाठः।
११. सानौ इति न.सं.पु.पाठः।
१२. त्रिविधैर्भक्तिपूर्वक इति न.सं.पु.पाठः।
१३. दर्भोदकैस्तथा केचित्पांशुमुष्टिं ग्रसन्सकृत् इति न.सं.पु.पाठः।
१४. पद्मासनश्च कूर्माख्य ऊर्ध्वबाहुस्तथा पर इति न.सं.पु.पाठः।
१५. स्तम्भकार्यः पुनः केचिदधोमुखस्तथापर इति न.सं.पु.पाठः।

पादोग्ररोपणाः केचित् पार्ष्णिरोपाश्च केचन[१६]। हंसासनास्तथा केचिन्मयूरकुक्कुटासनाः ॥२३॥
एवं नानाविधा भूत्वा तेपिरे सुचिरं भृशम्। दिव्यवर्षसहस्राणि विष्णुमाराध्य दानवाः ॥२४॥
ततश्च वरदानार्थमवतर्तुं[१७] मनो दधे। आहूय देवता विष्णुरमन्त्रयच्च तैः सह[१८] ॥२५॥
रुद्रोऽपि त्वरितं तत्र वक्तुं समाययौ मुदा। तच्चेष्टाञ्च समालोक्य व्याजहार नभःस्थलात् ॥२६॥

शर्व उवाच

भो विष्णोऽनेन रूपेण वरं दातुञ्च मा व्रज। दिव्यदेहेन दैत्येभ्यः सत्यमेतन्न संशयः ॥२७॥
बुद्धदेहं समाश्रित्य शान्तिज्ञानसमायुतः[१९]। अज्ञानैरसुरान् सर्वान् छन्दयन्नुपशान्तय ॥२८॥

स्कन्द उवाच

आकर्ण्य शर्ववाक्यञ्च ततो विष्णुर्मुने द्रुतम्। शुद्धोदनस्य वीर्येण[२०] चाऽवतर्तुं समाविशत् ॥२९॥
मायादेव्याः पुनस्तस्या गर्भमाविशदाशु च। दशमासस्थितो विष्णुर्लोकवृत्तिं प्रदर्शयन्[२१] ॥३०॥
ततो द्वापरशेषान्ते[२२] सर्वग्रहे शुभे गते। स विष्णुर्लोकरक्षार्यै[२३] ह्यवततार गर्भतः ॥३१॥
माघशुक्लचतुर्थ्याञ्च प्रादुर्भूतो महाविभुः। बुधश्रवणयुक्तायां कलौ प्राप्ते[२४] सति ध्रुवम् ॥३२॥
तस्य जन्मदिने धीमन्नानन्दो जगतां भृशम्। अभूच्च सर्वसत्त्वानां सुखसम्पत्प्रदं शिवम् ॥३३॥
नेदुर्दुन्दुभयो व्योम्नि पुष्पवृष्टिर्बभूव च[२५]। गन्धर्वाः प्रजगुर्वाद्यैर्ननृतुश्चाऽप्सरोगणाः ॥३४॥

---

कसैले पाउको अगाडिको भाग भुईंमा टेक्यो भने कसैले कुर्कुच्चो टेकेर तपस्या गऱ्यो। कोही हाँसको आसनमा बसे भने कसैले मयूरासन तथा कुक्कुटासन अँगाले। यसरी दानवहरूले दिव्य हजार वर्षसम्म नाना रूप लिएर विष्णुको आराधना गर्दै धेरै समयसम्म तपस्या गरे। त्यसपछि भगवान् विष्णुले देवताहरूलाई बोलाएर उनीहरूसँग राय सल्लाह लिई राक्षसहरूलाई वरदान दिने मन गर्नुभयो। तिनीहरूको क्रियाकलाप देखी केही कुरा भन्नका लागि भगवान् शिवजी पनि तुरुन्त आउनुभयो र आकाशबाट बोल्नुभयो ॥२३-२६॥

शिवजीले भन्नुभयो – हे विष्णु ! यो दिव्य शरीर लिएर यस रूपमा वर दिन तपाईं नजानुहोस्। शान्त र ज्ञानी बुद्धको शरीर लिएर राक्षसहरूमा अज्ञान फैलाई तिनीहरूलाई शान्त गर्नुहोस् ॥२७-२८॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! शिवजीको यस्तो भनाइ सुनेर भगवान् विष्णुले अवतार लिनका लागि शुद्धोदनको वीर्यमा प्रविष्ट भई मायादेवीको गर्भमा तुरुन्त प्रवेश गर्नुभयो र लोकलाई देखाउन दश महिनासम्म त्यहाँ अर्थात् गर्भमा बस्नुभयो ॥२९-३०॥

त्यसपछि द्वापर युगको अन्त्यमा सबै ग्रहहरू शुभस्थानमा रहेको बेला पारेर लोकको रक्षाका निमित्त मायादेवीको गर्भबाट भगवान् विष्णुले अवतार लिनुभयो। कलियुग लागेपछि बुद्धबार श्रवण नक्षत्र परेको माघ शुक्ल चतुर्थी तिथिका दिन भगवान् प्रादुर्भाव हुनुभयो। हे अगस्त्य मुनि ! उहाँ जन्मिएको दिन संसार अत्यन्त आनन्दित भयो, सम्पूर्ण प्राणीहरूलाई सुखसम्पत्तिदायक कल्याण प्राप्त भयो। आकाशमा नगराहरू बजे, पुष्पवृष्टि भयो, गन्धर्वहरू बाजा बजाएर गाउन थाले, अप्सराहरू नाँचे ॥३१-३४॥

---

१६. पादाग्र रोपिताः केचित्पार्ष्णिमारोप्य हि क्वचित् इति न.सं.पु.पाठः।
१७. ततश्च वरादानाय अवतर्त्तुम् इति न.सं.पु.पाठः।
१८. विष्णुर्मन्त्रयन्तैः समं तदा इति न.सं.पु.पाठः।
१९. शान्तज्ञानसमो युत इति न.सं.पु.पाठः।
२०. कुक्षिं वै इति न.सं.पु.पाठः।
२१. विष्णुलौकिकदर्शनाय वै इति न.सं.पु.पाठः।
२२. ततस्त्रियुगशेषान्ते इति न.सं.पु.पाठः।
२३. लोकरक्षाय विष्णुर्वै इति न.सं.पु.पाठः।
२४. कलिप्राप्ते इति न.सं.पु.पाठः।
२५. पुष्पवृष्टिर्बवर्ष च इति न.सं.पु.पाठः।

ततो ब्रह्मादयो देवाः स्वर्गादागत्य सत्वरम्। ददृशुर्बुद्धरूपं तं सर्वसत्त्वानुकम्पकम् ॥३५॥
विशालनयनं देवं मौनिनं शान्तरूपिणम्। सर्वलक्षणसंयुक्तं बिम्बोष्ठं सुस्मिताननम् ॥३६॥
दीर्घपीनकरं दिव्यं कम्बुग्रीवञ्च शैशवम्। सुकपोलं वरघ्राणं विस्तृतोरःस्थलं विभुम् ॥३७॥
आजानुहस्तपद्मञ्च पादपद्मनखोज्ज्वलम्। ध्यानेक्षणं दयाशीलं स्वल्पशब्दं[२६] कृशोदरम् ॥३८॥
स्वभासा भासमानायां शय्यायां स्थितमादृतम्[२७]। पितरौ मोहयन्तञ्च[२८] भस्मनीव यथाऽनलम् ॥३९॥
दिने दिने ववर्द्धासौ शुक्लपक्षे यथा शशी। त्रिवर्षे च गुरुस्तस्य मुण्डनं हि चकार सः ॥४०॥
ततस्तस्य पुनः शीघ्रं सप्तवर्षे द्विजैः शुभैः[२९]। उपवीतञ्चकाराऽऽर्य हुत्वा चाऽग्निं यथाविधि ॥४१॥
तस्मै दण्डं ददौ ब्रह्मा भिक्षापात्रं ददौ हरः। क्षौमं चैलं गुरुर्भूयः कषायरञ्जितं ददौ ॥४२॥
तुष्टाव च ततो ब्रह्मा सिद्धर्षिगणसंयुतः। इन्द्रो ददौ मुदा छत्रं तञ्च सम्मानयन् मुने ॥४३॥
पाशिवायू मुदायुक्तौ तस्य पार्श्वे स्थितौ भृशम्। चाऽमराभ्यां स्तवैः[३०] सार्द्धं तमवीजयतां मुदा ॥४४॥
शेषादयश्च दिक्पालाः[३१] सेवाञ्चक्रुर्मुदान्विताः। दिक्बन्धनञ्च कुर्वन्तो वारयन्तश्च दुष्कृतम्[३२] ॥४५॥
ब्रह्मा हरश्चैव तदादि आर्या बुद्धावतारान्सहसा हि चक्रुः।
देवाश्च शेषा मुनयस्तथाऽन्ये तान् त्वञ्च जानीहि कलौ प्रधानान् ॥४६॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे बुद्धावतारो नाम चतुःषष्टितमोऽध्यायः ॥६४॥

---

त्यसपछि ब्रह्मा आदि गरिएका देवताहरू स्वर्गबाट हत्त न पत्त आएर सम्पूर्ण प्राणीलाई कृपा गर्ने भगवान् बुद्धका रूपको दर्शन गरे। उहाँका आँखा ठूला थिए, चुप लाग्नुभएको थियो, उहाँको स्वरूप शान्त थियो, सम्पूर्ण लक्षणले युक्त भएको हुनुहुन्थ्यो, गोलकाँक्रीजस्ता ओठ थिए र हँसिलो अनुहार थियो। लामा सुडौल हात थिए, दिव्य शङ्खको जस्तो घाँटी भएका शिशु हुनुहुन्थ्यो, सुन्दर गाला थिए, उत्कृष्ट किसिमको नाक थियो र फैलिएको छाती थियो। उहाँका घुँडासम्म पुग्ने हातरूपी कमल थिए, चरणकमलका नङबाट ज्योति फैलिएको थियो, ध्यानपूर्वक हेर्नुहुन्थ्यो, दयाशील हुनुहुन्थ्यो, थोरै रुनुहुन्थ्यो, उहाँको पातलो कम्मर थियो। उहाँ आफू सुतेका ओछ्यानलाई आफ्नो कान्तिले प्रकाशित तुल्याइरहनुभएको थियो। सम्मान्य बुद्ध भगवान् खरानीमा आगो रहेझैँ आमा र बाबुलाई मख्ख पारेर बस्नुभएको थियो। उहाँ शुक्लपक्षमा चन्द्रमा दिनानुदिन बढेझैँ बढ्नुभयो। तीन वर्ष पुगेपछि गुरुले उहाँको मुण्डन गरे ॥३५–४०॥

हे अगस्त्य मुनि ! सात वर्ष पुगेपछि विधिपूर्वक अग्निको हवन गरेर उहाँको छिट्टै व्रतबन्ध गरियो। उहाँलाई ब्रह्माले लट्ठी दिनुभयो, शिवजीले भिक्षा माग्ने भाँडो दिनुभयो, फेरि बृहस्पतिले गेरु रङ्गले रङ्गाएको कपडा दिए। हे अगस्त्य मुनि ! सिद्ध र ऋषिहरूका साथ रहेका ब्रह्मा अत्यन्त प्रसन्न हुनुभयो। इन्द्रले खुसी भएर उहाँलाई छाता दिए र ओढाए। वरुण र वायु प्रसन्न भएर दुबैतिर सँगै बसेर स्तुति गर्दै उहाँलाई चामर हम्के। दिशाका मालिकहरू र बाँकी रहेका अरूहरूले पनि प्रसन्न भएर अरिष्टहरू हटाउँदै वरपरका दिशाको हेरचाह गरी उहाँको सेवा गरे। त्यसै समयदेखि ब्रह्मा, शिव, विष्णु, देवता र अरू मुनिहरूले आ–आफ्नो समयमा बुद्धको अवतार लिँदै आएका छन्। त्यसैले तपाईं कलियुगमा बुद्धहरूको अवतार प्रधान हुन्छ भनेर जान्नुहोस् ॥४१–४६॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा बुद्धावतारनामक चौसट्ठियौं अध्याय पूर्ण भयो।

---

२६. स्वल्परवम् इति न.सं.पु.पाठः।
२७. स्वभासा भासयन् शैय्यां स्थितं सर्वज्ञमाद्रितम् इति न.सं.पु.पाठः।
२८. मोहयन्मातरं तातम् इति न.सं.पु.पाठः।
२९. च तस्य वै इति न.सं.पु.पाठः।
३०. पुन इति न.सं.पु.पाठः।
३१. दिक्पालाश्च शेषाश्च इति न.सं.पु.पाठः।
३२. संरक्षणश्च दिशस्तत्र अरिष्यन्वारयन्भृशम् इति न.सं.पु.पाठः।

# पञ्चषष्टितमोऽध्यायः

जातिस्मरणतीर्थमहिमा दैत्यानां पातालवासप्रसङ्गश्च

स्कन्द उवाच

छत्रेण वार्य्यमानोऽसौ बुद्धगणपुरस्कृतः। पिण्डपात्रं समादाय सचक्रदण्डहस्तकः ॥१॥
शनैः शनैर्ययौ बुद्धः तपःस्था यत्र दानवाः। अन्वेषयन् क्षितौ कीटान्पदं विन्यस्य वर्त्मनि ॥२॥
ज्ञानतीर्थतटे शुभ्रे तपस्थान् दैत्यसत्तमान्। ददर्श भगवान् भक्तान् सहस्राब्दतपःकृशान् ॥३॥
व्याजहार तदा ताँस्तान्[१] भगवान्भूतभावनः। कुम्भज वरदानाय तपस्विनः[२] प्रहर्षवान् ॥४॥

बुद्ध उवाच

भो दैत्यसत्तमा भक्ता वृणीध्वं साम्प्रतं वरम्[३]। युष्माभिः काङ्क्षितं यत्तत्सहस्राब्दैः समर्जितम् ॥५॥
वस्तपःस्नेहपाशेन[४] बध्वाऽऽनीतं तपस्विनाम्[५]। वो भक्त्यनुचरै रुद्ध्वा[६] इहाऽऽनीतं विदुश्च माम् ॥६॥
तपोवत्सतरीं धेनुं वः प्रसवार्थमागताम्[७]। ये ये कामाः[८] प्रदुह्यन्तां कामधेनुं हि मां ध्रुवम् ॥७॥
यं यमिच्छन्ति मद्भक्ता दृढभावात्मनो मयि[९]। तं तं दास्याम्यहं दैत्या भक्तिवित्तानुसारतः ॥८॥

तपस्विन ऊचुः

नमो देवाधिदेवाय विष्णवे बुद्धरूपिणे। सर्वदाय च बुद्धाय कृपाशील नमोऽस्तु ते ॥९॥
प्रार्थयामो[१०] वयं त्वाञ्च मनसा[११] काङ्क्षितान्वरान्। दातुं समागतश्चेन्नो वरान् हि भगवन् ध्रुवम् ॥१०॥

---

## अध्याय – ६५

जातिस्मरणतीर्थको महिमा र दैत्यहरूको पातालवासको प्रसङ्ग

कार्तिक स्वामीले भन्नुभयो – छाता ओढेका, बौद्ध गणको अगाडि लागेका भगवान् बुद्ध हातमा चक्र, लट्ठी र भाँडो लिएर बिस्तारै बिस्तारै भूमिमा रहेका कीरालाई हेरी हेरी बाटमा पैताला टेकेर राक्षसहरू तपस्या गरेर बसेको ठाउँमा जानुभयो। हे अगस्त्य मुनि ! ज्ञानतीर्थको सुन्दर तटमा हजारौँ वर्षसम्म गरेको तपस्याले गर्दा अत्यन्त दुब्ला भएका भक्त तपस्वी दैत्यहरूलाई भगवान्ले देख्नुभयो। त्यसपछि प्राणीहरूका दयालु भगवान् खुसी हुँदै वरदान दिनका लागि तिनीहरूसित बोल्नुभयो ॥१–४॥

बुद्धले भन्नुभयो – हे भक्त दैत्य हो ! तिमीहरूले हजारौँ वर्षदेखि चाहना गरेको कुरा के हो ? अब वर माग। तिमीहरूको स्नेहरूपी बन्धनले बाँधेर तपस्वीले दोहिने म कामधेनुलाई तिमीहरूको भक्तिरूपी सेवकले थुनेर यहाँ ल्याएका छन् भन्ने ठान। तपस्यारूपी बाच्छो भएको भर्खर व्याएको म कामधेनु हुँ। जे कुराको इच्छा छ, त्यही त्यही कुरा मबाट सक्दो दोहन गर। जसले ममाथि दृढ प्रेम राखेको छ, त्यस्ता भक्तहरूले जे-जे चाहन्छन्, उनीहरूको भक्तिरूपी सम्पत्ति अनुसार त्यही त्यही म दिन्छु ॥५–८॥

तपस्वी दैत्यहरूले भने – देवताका पनि देवता बुद्धरूप लिने विष्णुलाई नमस्कार छ। हे कृपाशील ! सम्पूर्ण कुरा दिने बुद्धरूप हजुरलाई नमस्कार छ। यदि तपाईं हामीहरूलाई वर दिन आउनुभएको हो भने हामी तपाईंसित माग्छौँ। हे भगवन् ! हामीलाई उत्कृष्ट वरहरू दिनुहोस् ॥९–१०॥

---

१. तेभ्य इति न.सं.पु.पाठः।
२. तपस्विभ्य इति न.सं.पु.पाठः।
३. वरं वृणीध्व साम्प्रतम् इति न.सं.पु.पाठः।
४. वस्तपेऽस्नेहपाशेन इति न.सं.पु.पाठः।
५. तपस्विने इति न.सं.पु.पाठः।
६. वो भक्त्यनुचरो रुध्य इति न.सं.पु.पाठः।
७. प्रस्रवामिहागताम् इति न.सं.पु.पाठः।
८. यं यं कामम् इति न.सं.पु.पाठः।
९. मयि भावदृढात्मन इति न.सं.पु.पाठः।
१०. याचयाम इति न.सं.पु.पाठः।
११. अस्माभि इति न.सं.पु.पाठः।

सामर्थ्यानि सुतुङ्गानि[१२] सर्वोन्नतानि सर्वदा। त्रैलोक्योन्मथने नूनं शक्तानि नः प्रदीयताम् ॥११॥
येन भूयः करिष्यामो राज्यं त्रैलोक्यमार्य वै। विजित्य तत्र संस्थाँश्च सर्वलोकान् चराचरान् ॥१२॥
प्रकृत्या च वयं दैत्याः स्वर्गराज्यार्थिनो विभो। वरमेनं[१३] समिच्छामो भगवन् सत्प्रदीयताम् ॥१३॥

स्कन्द उवाच

एतद्वचो निशम्यार्यो दानवानां तपस्विनाम्। बुद्धश्चिन्ताकुलोऽभूद्वै लोकरक्षणचिन्तितः ॥१४॥
भूयो व्याचष्ट दैत्येभ्यो वरं दातुं मुने हि सः। कूटवाचा[१४] च सम्भाष्य स्वमायया विमोहयन् ॥१५॥

भगवानुवाच

अहो चित्रं महानत्र तपस्विनोऽपि मायया। विमोहिताश्च यूयं न मुह्यन्ति प्राकृताः कथम् ॥१६॥
तपस्विनोऽपि राज्यानि ज्ञानयोगयुताज्जनात्[१५]। मायायुक्तानि काङ्क्षन्ति किं ब्रूमोऽत्र तपस्विनः ॥१७॥
यो देहस्य[१६] सुखं त्यक्त्वा राज्यानां सुखमिच्छति। तद्देहो यातनामूलं षड्वर्गव्याधिसंयुतः ॥१८॥
विहाय चेश्वरं देवं स्वाङ्गेऽन्यञ्च समिच्छति। वत्सा मैवं हि मूढात्मा दैवेनैव प्रवञ्चितः ॥१९॥
बहूनि सन्ति पापानि राज्ये दोषोद्भवानि च[क]। तस्माद्राज्यं परित्याज्यमन्यायदण्डनीतिभिः ॥२०॥
यावदेव सुखं राज्यात्[१७] भूपतीनां भवेन्मुने। तत्सर्वं यातनामूलं ह्यन्यायतो महाधमम् ॥२१॥
हत्वा जन्तूंश्च तन्मांसं सुखायैव सुखं हि यः। भुनक्ति स्वाङ्गपोषाय नरकेषु स तिष्ठति[१८] ॥२२॥
परदारान् परद्रव्याणीप्सन्ति ये नृपाधमाः। त एव नारकाः दैत्याः सुखस्थाः दुःखभागिनः ॥२३॥

---

हे भगवन् ! जुन पराक्रमबाट हामी चर, अचर र सबै प्राणीहरूलाई आफ्नो वशमा गरेर तीनै लोकको राज्य गर्न सक्छौं, त्यस किसिमको तीनै लोकलाई मथन गर्न सक्ने सबैभन्दा उत्कृष्ट पराक्रम हामीलाई दिनुहोस्। हे भगवन् ! स्वभावले हामी दैत्य हौं, हामी स्वर्गको राज्य चाहन्छौं, हाम्रो यही वरको कामना छ, त्यो हामीलाई दिनुहोस्॥११–१३॥

कार्तिक स्वामीले भन्नुभयो– तपस्वी दानवहरूको यो कुरा सुनेर कसरी लोकको रक्षा गर्न सकिएला भनेर चिन्ता गर्ने भगवान् बुद्धले विचार गर्नुभयो। त्यसपछि उहाँले आफ्नो मायामय वचनद्वारा दैत्यहरूलाई मोहित तुल्याएर सम्बोधन गर्दै फेरि भन्नुभयो ॥१४–१५॥

भगवान्ले भन्नुभयो– मलाई त आश्चर्य लाग्यो। किनभने तपाईंहरू तपस्वी भएर पनि यसरी मोहित हुनुभएको रहेछ भने सामान्य मानिसहरू किन मोहित नबनून्। म तपाईं तपस्वीहरूलाई के भनौं ? ज्ञानयोगमा डुबेका तपाईंजस्ता तपस्वीहरूले मायामा बाँधिएको राज्यलाई चाहन्छन् र ? अर्थात् चाहदैनन्। आफ्नो शरीरभित्र रहेको सुखलाई छोडेर जो मानिस राज्यको सुख चाहन्छ, त्यो चाहना भनेको काम, क्रोध आदि षड्वर्ग र रोगले ग्रस्त भएको शरीरको यातनाका लागि मात्रै हुन्छ। ईश्वरलाई आफ्नो शरीरबाट हटाएर जसले अर्को कुरा चाहन्छ, त्यो मानिस दैवद्वारा ठगिएको मूर्ख हो ॥१६–१९॥

राज्यमा तमोगुणी मानिसबाट प्रहट भएका अनेक पापहरू छन्। त्यसकारण अन्यायपूर्ण शासनव्यवस्था भएको राज्य त्यागिदिनुपर्छ। जहिलेसम्म राजाहरू सुख सम्झिएर राज्य गर्छन्, त्यही समयसम्म उनीहरू अन्यायपूर्वक अत्यन्त अधम काम गरिरहेकै हुन्छन्। त्यो सबै यातना हो। जसले सुख र आफ्नो अङ्गको पुष्टिका लागि प्राणीहरू मारेर आनन्दसँग मासु खान्छ, त्यो व्यक्ति नरकमा पर्छ। हे दैत्य हो ! जुन अधम राजाहरूले अर्काकी पत्नी र अर्कोको सम्पत्तिको चाहना गर्छ, सुख पाईकन पनि दुःख भोग्ने ती राजाहरू नरक पर्ने व्यक्तिहरू हुन् ॥२०–२३॥

---

१२. पराक्रमाणि तुङ्गानि इति न.सं.पु.पाठः।
१३. एतद्वरम् इति न.सं.पु.पाठः।
१४. दत्तभासा इति न.सं.पु.पाठः।
१५. ज्ञानयोगयुताय न इति न.सं.पु.पाठः।
१६. स्वदेहेषु इति न.सं.पु.पाठः।
क. राज्येषु बहवः पापाः सन्ति दोषोद्भवाः सदा। तस्माद्राज्यं
१७. यावदस्ति सुखं राज्यम् इति न.सं.पु.पाठः।
१८. भुनक्ति स्वाङ्गपुष्ट्य सैव तिष्ठति नारके इति न.सं.पु.पाठः।

ब्रह्मस्वस्यापहारस्य विषेण च महीपतिः[२०] । समुन्मत्तो भवेच्चेह यावच्चन्द्रार्कतारकम्[२१] ॥२४॥
तस्माद्राज्यं परित्याज्यं तपस्विभिश्च सन्ततम् । हिंसा क्रोधश्च सौख्यञ्च राज्यं सन्त्यज्यते बुधैः ॥२५॥
राज्येऽपि च महद् दुःखं सन्धिविग्रहचिन्तया । पुत्रादपि भयं यत्र तत्र सौख्यं हि कीदृशम् ॥२६॥
तस्मात् सन्त्यज्य तत्सर्वं सात्विकं धाम संश्रयेत्[२२] । प्राप्नोति पुरुषो धीरो वरं सुखञ्च योगतः ॥२७॥
तस्माद् द्रोहो न कार्यो हि न विधेयञ्च हिंसनम्[२३] । अभीप्सितं[२४] परं स्थानं तत्सर्वं त्यज्यतां[२५] ध्रुवम् ॥२८॥
अहिंसा परमो धर्मश्चाहिंसा[२६] परमो मखः । व्रतं परमहिंसा सा चाहिंसा परमो बलिः ॥२९॥
हिंसाऽधर्मो परो ज्ञेयो हिंसा च तीव्रवेदना । हिंसा च परमं पापं हिंसा चायुर्विनाशिनी[२७] ॥३०॥
हन्यन्ते हिंसया शीघ्रमायुः[२८] कीर्त्तिऽयशो धनम् । क्षिप्यते नरके देहस्तस्मात्तां परिवर्जयेत् ॥३१॥
एकधा हन्ति यो जन्तुमविवेकेन निर्दयः । सहस्रधा च तं जन्तुः परत्र च हनिष्यति ॥३२॥
तस्मादिति विवेकेन न हन्याच्च पशुं बुधः । परात्मानं स्वात्मतुल्यं[२९] बुद्ध्वा चेह च सन्ततम् ॥३३॥
इन्द्रियाणां विकारा ये त एव शत्रवो मताः[३०] । कलेवरे स्थितास्ते च हन्तव्या अविचारतः[३१] ॥३४॥
न लिप्यन्ते च तत्पापैर्मुच्यन्ते नात्र संशयः । इन्द्रियदोषसर्वारिहन्तारः[३२] पुरुषाश्च ये ॥३५॥

---

जुन राजाले उन्मत्त भएर ब्रह्मस्व हरण गर्छ, त्यसको विषले गर्दा त्यो राजा चन्द्रमा र सूर्य रहेसम्म नरकमा गएर बस्छ। त्यसैले तपस्वीहरूले राज्य भन्ने कुरा सधैँ छोड्नुपर्छ। यो कुरा बुझ्ने व्यक्तिले हिंसा, क्रोध, सुख र राज्यलाई छोडिदिन्छन्। सन्धि, विग्रह आदिको चिन्ताले गर्दा राज्यमा पनि ठूलो दुःख हुन्छ। जहाँ छोरादेखि पनि डराउनुपर्छ, त्यस्तो सुखलाई के सुख मान्ने ?। त्यसैले त्यो सबै कुरा छोडेर सात्विक मार्गलाई अवलम्बन गर्नुपर्छ। योगमार्गद्वारा धैर्यशाली पुरुषले ठूलो सुख पाउँछ। त्यसकारण द्रोह भनेको गर्दै गर्नुहुँदैन, हिंसा पनि गर्नुहुँदैन। जसले उत्तम स्थानको चाहना राख्छ, त्यसले त्यो सबै अवश्य छोड्नुपर्छ ॥२४-२८॥

अहिंसा नै सबैभन्दा ठूलो धर्म हो, अहिंसा नै सबैभन्दा ठूलो यज्ञ हो, अहिंसा नै सबैभन्दा ठूलो व्रत हो, अहिंसा नै सबैभन्दा उत्तम बलि हो। हिंसा भनेको अर्काको सम्पत्ति हो भनेर ठान्नुपर्छ, हिंसा सबैभन्दा ठूलो वेदना हो, हिंसा सबभन्दा ठूलो पाप हो, हिंसा आयुलाई नाश गर्ने परम तत्त्व हो। हिंसाले तुरुन्त आयु, कीर्ति, यश र धनलाई नाश गर्छ र नरकमा लगेर शरीरलाई हाल्छ। त्यसैले हिंसा छोड्नुपर्छ। जो अविवेकी बनेर एकपटक मात्रै पनि अर्काको हिंसा गर्छ, त्यसले यस लोक र परलोकमा हजार पटकसम्म दुःख पाउँछ ॥२९-३२॥

त्यसैले आफ्नो आत्मा र अर्काको आत्मालाई निरन्तर बराबर ठानेर विद्वान्ले विवेकको उपयोग गरी पशुलाई मार्नुहुँदैन। विकृत अवस्थामा रहेका इन्द्रियहरू नै अत्यन्त शत्रु हुन् भनेर विद्वान्हरूले बुझ्नुपर्छ। तिनीहरूलाई बारम्बार शरीरभित्र नै नियन्त्रण गर्नुपर्छ। विकृत इन्द्रियका दोष नै मुख्य शत्रु हुन्, तिनलाई जुन मानिसले दमन गर्छ, ती पुरुषहरू पापमा लिप्त हुँदैनन्, पापबाट मुक्त हुन्छन्, यसमा कुनै शङ्का छैन ॥३३-३५॥

---

१९. ब्रह्मस्वापहृताद्दोषात्तद्विषेण महीपति इति न.सं.पु.पाठः ।
२०. आचान्द्रार्कौ च नारकी इति न.सं.पु.पाठः ।
२१. धाममाश्रयेत् इति न.सं.पु.पाठः ।
२२. तस्माद् द्रोहं न कार्यं हि हिंसाञ्चैव तथा पुन इति न.सं.पु.पाठः ।
२३. य इच्छति इति न.सं.पु.पाठः ।
२४. त्यजतु इति न.सं.पु.पाठः ।
२५. धर्म अहिंसा इति न.सं.पु.पाठः ।
२६. चायुर्विनाशकि इति न.सं.पु.पाठः ।
२७. हिंसया हन्यते चाशु चायु इति न.सं.पु.पाठः ।
२८. परात्मा स्वात्मना तुल्यम् इति न.सं.पु.पाठः ।
२९. इन्द्रियाणि विकाराणि शत्रूणि च भृशं बुधै इति न.सं.पु.पाठः ।
३०. कलेवरे च हन्तव्यमविचार्य हि सन्ततम् इति न.सं.पु.पाठः ।
३१. विकारेन्द्रियसर्वारिहन्तार इति न.सं.पु.पाठः ।

सर्वोत्तमसुखान्याशु प्रलभ्यन्ते च तैर्भृशम्। सर्वदेहगतान् शत्रून्[33] हन्ति योगीश्वरः सदा ॥३६॥
नृपोऽपि दुर्लभेनाऽऽशु सुसुखेन प्रमोदते। शरीरे विद्यते सौख्यं सन्ति पापास्तथाविधाः ॥३७॥
तस्मात् पापरिपुर्धीरैः प्रहन्तव्यः सुखेच्छुभिः[34]। सन्ति देहेषु तीर्थानि देवश्चैव य ईप्सितः ॥३८॥
सर्वसुखानि भो दैत्याः सत्यमेतानि योगिनः। संसारबीजमज्ञानं संसारज्ञः पुमान् यतः ॥३९॥
ज्ञानात्तस्य निवृत्तिः स्यात् प्रकाशात्तमसो यथा। अज्ञाने सति रोगाद्या धर्माऽधर्मौ भवन्त्यपि[35] ॥४०॥
धर्माधर्मवशात्पुंसः शरीरमुपजायते। शरीरे सति सङ्क्लेशैः सर्वः संयुज्यते यतः ॥४१॥
ततः क्लेशप्रहाणार्थे पुनर्देहं न कामयेत्। जगतस्तत्त्वसंबोधादज्ञानं विनिवर्त्तते ॥४२॥
अज्ञानविनिवृत्तौ च रोगादीनामसम्भवः। रोगाद्युपशमात्पुंसः पुण्यपापपरिक्षयः ॥४३॥
तत्क्षयाच्च शरीरेण न पुनः सम्प्रयुज्यते। अशरीरश्च सङ्क्लेशैः सर्वैरेव न बाध्यते ॥४४॥
क्लेशमुक्तः प्रसन्नः स मुक्त इत्यभिधीयते। तस्मादज्ञानमूलानि सर्वदुःखानि देहिनाम् ॥४५॥
ज्ञानेन च तदज्ञानं निवर्त्तेत न कर्मभिः। नास्ति ज्ञानादृते पुंसां पुण्यपापपरिक्षयः ॥४६॥
मोक्षार्थी पुरुषस्तस्माज्ज्ञानमेव सदाभ्यसेत्। मार्ज्यमानः सदा यद्वद्दर्पणो निर्मलो भवेत् ॥४७॥
ज्ञानाभ्यासात्तथा पुंसां बुद्धिर्भवति निर्मला। ज्ञानामृतेन तृप्तस्य कृतकृत्यस्य योगिनः ॥४८॥
नैवाऽस्ति किञ्चित्कर्त्तव्यमस्ति चेन्न स तत्त्ववित्। लोकद्वयेऽपि कर्त्तव्यं किञ्चित्तस्य न विद्यते ॥४९॥
इहैव स विमुक्तः स्यात्सम्पूर्णप्रियदर्शनः। नास्ति ज्ञानात्परं किञ्चित्पवित्रं पापनाशनम् ॥५०॥
तस्मादभ्यासयोगेन शनैरात्मनि विन्दति।

---

त्यसो गर्दा मानिसहरूले सबैभन्दा उत्तम सुखलाई तुरुन्त प्राप्त गर्छन्। त्यसैले योगीले सधैँ आफ्नो शरीरमा रहेका इन्द्रियरूपी शत्रुलाई दमन गरेको हुन्छ। राजा दुर्लभ सुख पाएँ भनेर तुरुन्त प्रसन्न हुन्छ। शरीरमा सुख रहेको हुन्छ, त्यस्तै धेरै पापहरू पनि रहेका हुन्छन्। यो कुरा बुझेर सुखको चाहना गर्ने पुरुषले पापरूपी शत्रुलाई नाश गर्नुपर्छ। शरीरमा तीर्थहरू छन्, शरीरमा नै आफूले चाहेका देवताहरू छन्, शरीरमा नै सुख छ। हे योगी दैत्य हो ! यो कुरा साँचो हो। संसारको बीज भनेको अज्ञान हो। जसरी उज्यालो भएपछि अन्धकार हट्छ, त्यसरी नै संसारको बारेमा थाहा पाएपछि अज्ञानबाट मानिस हट्छ। अज्ञान भएपछि रोग, धर्म, अधर्म, तज्जन्य कीर्ति आदिको उत्पत्ति हुन्छ। धर्म र अधर्मको कारणले गर्दा पुरुषको शरीर पैदा हुन्छ ॥३६–४०॥

हे दैत्य ! शरीर भएपछि त्यसमा सम्पूर्ण दुःखहरू गाँसिन्छन्। त्यसैले दुःख नाश गर्न चाहने हो भने शरीर धारणा गर्ने इच्छा गर्नुहुँदैन। संसारको तत्त्व बुझेपछि अज्ञान निवृत्त भएर जान्छ। अज्ञान निवृत्त भएपछि रोगादिको सम्भावना हुँदैन। रोगादि शान्त भएपछि पुरुषका पुण्य र पापको नाश हुन्छ। तिनीहरूको नाश भएपछि फेरि शरीरसित जोडिनुपर्दैन। शरीर नभएपछि सबै किसिमका दुःखहरूले पीडा दिन सक्दैनन्। क्लेशबाट मुक्त भएको हुँदा ऊ प्रसन्न हुन्छ, त्यसैलाई मुक्त भनेर भनिन्छ। त्यसैले प्राणीहरूका सबै दुःखहरू अज्ञानमूलक हुन्छन्। ज्ञानबाट त्यो अज्ञान हट्छ, कर्मबाट होइन। ज्ञानविना पुरुषहरूको पुण्य र पापको नाश हुँदैन, मोक्षको इच्छा राख्ने पुरुषले सधैँ ज्ञानको अभ्यास गर्नुपर्छ। जसरी पुछेपछि ऐना सधैँ सफा हुन्छ, त्यसरी नै ज्ञानको अभ्यास गर्‍यो भने पुरुषहरूको बुद्धि सफा हुन्छ ॥४१–४७॥

हे तत्त्वज्ञ दैत्य ! ज्ञानरूपी अमृतले तृप्त भएर कृतकृत्य बनेका योगीहरूको गर्नुपर्ने भन्ने कुनै कार्य हुँदैन। दुवै लोकमा पनि त्यसले गर्नुपर्ने कर्तव्य बाँकी रहँदैन, सबैको प्रियपात्र भएर त्यो व्यक्ति यसै लोकमा मुक्त हुन्छ। पापलाई नाश गर्ने पवित्र वस्तु ज्ञान बाहेक अर्को कुनै हुँदैन। त्यसैले अभ्यास गरेर बिस्तारै बिस्तारै मानिसले आत्मालाई चिन्नुपर्छ ॥४८–५०½॥

---

३२ एवं रिपून्सर्वदेहेषु इति न.सं.पु.पाठः। ३३. सुखेप्सितै इति न.सं.पु.पाठः।
३४ धर्माऽधर्मश्च तद्धयसौ इति न.सं.पु.पाठः।

व्रतानि दानानि तपांसि यज्ञाः संन्यासतीर्थाश्रमकर्मयोगाः ।
चित्तस्य शुद्धेरिह कारणानि विशुद्धचित्तं किल योगभूमिः ॥५१॥
ब्रूत मुक्तिं कथं तेषां निबद्धानां शुभाशुभैः । नहि देहभृतां शक्यं कर्म त्यक्तुं शुभाशुभम् ॥५२॥
गच्छतस्तिष्ठतो वापि तदवश्यं भवेद्यतः । अधर्मविनिवृत्तौ च भवेत्पुण्यमकुर्वतः ॥५३॥
धर्मत्यागादधर्मश्च स तिष्ठेन्निश्चलः कथम् । तस्माज्ज्ञानासिना तूर्णमशेषं कर्मबन्धनम् ॥५४॥
कामाकामकृतं छित्त्वा शुद्धः स्वात्मनि तिष्ठति । यथा वह्निर्महादीपः शुष्कमार्द्रञ्च निर्दहेत् ॥५५॥
तथा शुभाशुभं कर्म ज्ञानाग्निर्दहति क्षणात् । यथा ज्ञानं तथा ध्यानं ध्यानं ज्ञानं समं स्मृतम् ॥५६॥
ज्ञानध्यानरतः सौख्यं पुनर्मोक्षञ्च विन्दति । ज्ञानादैश्वर्यमतुलमैश्वर्यात्सौख्यमुत्तमम् ॥५७॥
ज्ञानेन तत्परित्यज्य वितनुर्मोक्षुमाप्नुयात् । सर्वेषामेव यज्ञानां ज्ञानयज्ञः परः स्मृतः ॥५८॥
नित्यः शुद्धः प्रसन्नश्च सर्वदोषविवर्जितः । एवं ज्ञात्वा स्वदेहेषु तीर्थदेवान्सुखानि च ॥५९॥
सर्वलोकान् विहायाशु नित्यं नन्दन्ति योगिनः । मनःस्रुवेण योगीशः श्वासहविर्जुहोति वै ॥६०॥
ध्यानसुखबलाग्नौ च ततो मुक्तेः स भाजनम्[३५] । तस्मादिह च राज्यं भो सुखाख्यं यद्यपि ध्रुवम् ॥६१॥
हित्वा गच्छत पातालं यद्यात्मसुखमीप्सितम्[३६] । स्वेषु स्वेषु च देशेषु स्थिता भक्ताश्च सन्ततम् ॥६२॥
चिन्तयत मयोक्तानि रक्षन्तः स्थानकं स्वकम्[३७] ॥६३॥

स्कन्द उवाच

एवं नानाविधं योगं बुद्धज्ञानसमुद्भवम् । बुद्धमुखाच्च्युतं दैत्याः समाकर्ण्य प्रहर्षिताः ॥६४॥
ऋतं वच इति ज्ञात्वा तपस्विनोऽसुरोत्तमाः । पातालगमनायाशु नेमुर्बुद्धावतारकम् ॥६५॥

---

व्रत, दान, तपस्या, यज्ञ, संन्यास, तीर्थ, आश्रम र योगले पुण्य र पापलाई विनाश गर्न सक्दैनन् । ज्ञानविना मानिसहरूले कैवल्य सुख पाउँदैनन् । जो मानिस पाप र पुण्यका कर्मले बाँधिएको छ, त्यस्तो व्यक्तिहरूको मुक्ति कसरी हुन्छ ? भन । शरीरधारी व्यक्तिले असल र खराब कर्म त्याग गर्न सक्दैनन् । हिँड्दा वा बस्दा त्यो कर्म अवश्य नै हुन्छ । अधर्म नाश भएपछि धर्म नगरे पनि पुण्य प्राप्त हुन्छ । धर्म त्याग गर्नाले अधर्म पैदा हुन्छ । त्यसैले मानिस तटस्थ कसरी हुन सक्छ र ? तसर्थ ज्ञानरूपी तरवारले मानिसले चाहेर वा नचाहीकन गरेका कर्मका बन्धनलाई छिनाल्नुपर्छ, त्यसपछि उसको आत्मा शुद्ध हुन्छ ॥५१–५४॥

जसरी खूबसित बलेको आगाले चीसो र सुकेका घाँसलाई समाप्त पार्छ, त्यसरी नै ज्ञानरूपी आगाले गरेका राम्रा नराम्रा कर्मलाई तुरुन्त नाश गर्छ । जस्तो ज्ञान हो, त्यस्तै ध्यान हो, ध्यान र ज्ञानलाई बराबर मानिएको छ । ज्ञान र ध्यानमा संलगन भएको व्यक्तिले सुख र मोक्ष पाउँछ । ज्ञानबाट अनुपम ऐश्वर्य प्राप्त हुन्छ, ऐश्वर्यबाट उत्तम सुख उपलब्ध हुन्छ । ज्ञानले गर्दा नै कर्मलाई छोडेर मरेपछि मोक्ष प्राप्त हुन्छ । सबै यज्ञहरूमध्ये ज्ञानयज्ञ उत्कृष्ट भनिएको छ । नित्य शुद्ध, प्रसन्न र सम्पूर्ण दोषबाट मुक्त भई आफ्नो शरीरमा सम्पूर्ण तीर्थ, देवता र सुखलाई धारण गर्ने योगीहरू सम्पूर्ण संसारलाई छाडेर सधैँ आनन्दित हुन्छन् । मनरूपी सुरोले योगीले श्वासरूपी हवनीय द्रव्यलाई ध्यानजन्य सुखरूपी अग्निमा हवन गर्छ र त्यसपछि ऊ मुक्त हुन्छ । त्यसैले यदि आफ्नो हित चाहन्छौ भने सुख नाम गरेको राज्य भन्ने वस्तुलाई छोडेर पाताल जाओ । हे भक्त हो ! आ–आफ्नो देशमा बसेर आ–आफ्नो लोकलाई रक्षा गर्दै मैले भनेका कुराको राम्रोसित चिन्तन गर ॥५५–६३॥

कार्तिक स्वामीले भन्नुभयो – यसरी विभिन्न किसिमका ज्ञानसँग सम्बद्ध उपदेशहरू बुद्ध भगवान्‌का मुखबाट सुनेर दैत्यहरू हर्षित भए । तपस्वी ती दैत्यहरूले त्यो उपदेशलाई साँचो ठानी पाताल जानका लागि बुद्धावतारलाई तुरुन्त नमस्कार गरे ॥६४–६५॥

---

३५. सभाजन इति न.सं.पु.पाठः ।
३६. यद्यात्मनः सुखेप्सितम् इति न.सं.पु.पाठः ।
३७. चिन्तयध्वं मयोक्तानि स्वं स्वं लोकं प्ररक्षयन् इति न.सं.पु.पाठः ।

दैत्या ऊचुः

नमो बुद्धाय देवाय ज्ञानदाय परात्मने। दयाशीलाय भव्याय प्रज्ञारूप नमोऽस्तु ते ॥६६॥
भगवन् तत्र गच्छामस्त्वत्प्रसादान्न संशयः। तत्रस्थाश्च वयं सर्वे कानि भोक्ष्यामहे विभो ॥६७॥

भगवानुवाच

अश्रद्धया च यद्दत्तं क्रोधेनैव तथाविधम्। अमेध्येन च यद्भक्तं मानुषैरविवेकिभिः ॥६८॥
द्वन्द्वभावेन यद्दत्तमश्रद्धया यदर्चितम्। क्रोधेन यत्कृतं पुण्यं दानेज्याभोजनं तथा ॥६९॥
तत्सर्वं लघु भोक्ष्यन्तु ममाज्ञयाऽसुराः सदा। इतरे चासुरा[३९] मह्यां मर्त्याश्च जन्मरूपिणः ॥७०॥
भविष्यन्ति च तत्सर्वं भक्षणस्य[४०] स्वभावतः। समाराध्य महेशानं तन्मनस्का भवन्तु वै ॥७१॥
तत्रस्था भक्तिपूर्वं वै गच्छत भोऽसुरा ध्रुवम्।

स्कन्द उवाच

इत्याकर्ण्य वचो दैत्याः पथ्यं चैवात्मनां मुने। प्रमोदन्ते स्म तद्वाक्यैर्हेतुभिः प्रेरितैस्तदा ॥७२॥
पातालं प्रययुर्हृष्टास्तपस्विनोऽसुरा भृशम्। प्रणम्यादौ शिरोभिस्तं परिक्रम्य पुनः पुनः ॥७३॥
मोदन्ते[४१] स्म सुराः सर्वे बुद्धावतारतो मुने। तदादि चोत्तरे देशे हिमवतो गिरेः सदा ॥७४॥
ततो देवगणाः सर्वे हर्षनिर्भरमानसाः। स्वं स्वं वासं समास्थाप्य तत्र च त्रिदिवं ययुः ॥७५॥
जातिस्मरणतीर्थे च मर्त्या वा पशवोऽपि वा। पूर्वजातिस्मृतिं तत्र लभन्ते ज्ञानसंयुताः[४२] ॥७६॥
ततो ज्ञात्वा करिष्यन्ति सुकृतिं पुण्यसञ्चयम्। पशवो वापि मर्त्या वा गच्छन्ति त्रिदिवं ततः ॥७७॥

---

दैत्यहरूले भने – ज्ञान दिने परमात्मा बुद्धदेवलाई नमस्कार छ। हे प्रज्ञास्वरूप भएका भगवान् ! दयाशील कल्याणकारी हजुरलाई नमस्कार छ। हे भगवन् ! हजुरको अनुग्रह अनुसार हामी पाताल जान्छौं, यसमा शङ्का छैन। हे प्रभु ! त्यहाँ बसेर हामीले खाने पदार्थ वा विषय के के हुनेछन् ? ॥६६–६७॥

भगवान्ले भन्नुभयो – हे दैत्य हो ! अविवेकी मानिसहरूले अश्रद्धा र रीसले जुन दिन्छन्, अपवित्र भएर जुन वस्तु खान्छन्, झगडा गरेर जे दिन्छन्, विनाश्रद्धा जुन पूजा गर्छन् र त्यो रीसले गरेको पुण्य, दान तथा यज्ञको प्रसाद मेरो निर्देशन अनुसार तिमीहरूले सधैं भोजन गर्नुपर्दछ। हे राक्षस हो ! अरू पनि पृथ्वीमा मनुष्य र प्राणीहरू हुन्छन्, ती सबै आफ्नो स्वभाव अनुसार भोजन गर्दा भोजनअनुसारका गुणस्वभावले युक्त हुन्छन्। हे दैत्य हो ! तिमीहरू जाओ। त्यहाँ गएर भक्तिपूर्वक शिवजीको आराधना गर्दै उहाँमा नै मन लगाओ ॥६८–७१½॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! यो कुरा सुनेर बुद्ध भगवान्का तर्कपूर्ण वाक्यहरूबाट प्रेरित हुँदै दैत्यहरूले त्यसैलाई आफ्नो कल्याण ठानी आनन्दित भए। पहिले उनीहरूले शिरले बुद्ध भगवान्लाई ढोगेर परिक्रमा गरे। त्यसपछि प्रसन्न र हर्षित हुँदै तपस्वी दैत्यहरू पाताल गए। यसरी बुद्धावतारबाट सबै देवताहरू आनन्दित भए ॥७२–७३½॥

त्यसै समयदेखि हर्षविभोर हुँदै देवताहरूले हिमालयको उत्तरतर्फ सदाका लागि आफ्नो वासस्थानको स्थापना गरेर स्वर्ग गए। त्यस जातिस्मरण तीर्थमा जुन मानिस वा पशुहरूले स्नान गर्छन्, तिनीहरूले आफ्नो पूर्व जुनीलाई यस जन्ममा सम्झन सक्छन् ॥ अनि उनीहरूले असल काम र पुण्य सञ्चय गर्नेछन्। त्यसपछि पशु हुन् वा मानिस, तिनीहरू स्वर्ग जानेछन् ॥७४–७७॥

---

३८. इतराश्चासुरा इति न.सं.पु.पाठः।
३९. भक्षण इति न.सं.पु.पाठः।
४०. मोदन्ति इति न.सं.पु.पाठः।
४१. पूर्वजातिस्मृतास्तत्र स्नानाद्भवन्ति सांप्रतम् इति न.सं.पु.पाठः।

एतच्च जातिस्मृतितीर्थपुण्यं श्रुत्वा लभन्ते[४२] प्रसभं हि मर्त्याः ।
आयुर्यशोभाग्यसुखानि सम्यज्ज्ञानञ्च बुद्धिं सततं मुने वै ॥७८॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे जातिस्मरणतीर्थमाहात्म्ये दैत्यानां पातालस्थितिर्नाम पञ्चषष्टितमोऽध्यायः ॥६५॥

---

हे अगस्त्य मुनि ! जुन मानिसले जातिस्मृति नाम गरेको यो पुण्यतीर्थको माहात्म्य श्रद्धाका साथ सुन्छ, त्यसले आयु, कीर्ति, भाग्य, सन्तान, सम्पत्ति, ज्ञान र बुद्धि निरन्तर पाउँछ ॥७८॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा जातिस्मरणनामक तीर्थको माहात्म्यवर्णनका प्रसङ्गमा बुद्धावतार भगवान्‌का उपदेशले दैत्यहरूको पातालस्थितिनामक पैंसट्ठियौं अध्याय पूर्ण भयो ।

---

४२. लभन्ति इति न.सं.पु.पाठः ।

# षट्षष्टितमोऽध्यायः

## ब्रह्मतीर्थमहिमा

अगस्त्य उवाच

तीर्थानाञ्चैव माहात्म्यं श्रुत्वा मनो विजृम्भते। ब्रह्मतीर्थप्रसङ्गेन गण्डक्याः सङ्गमे विभो ॥१॥

स्कन्द उवाच

धर्मधारा च विश्वाख्या द्वयोस्तु सङ्गमे[1] मुने। ब्रह्मतीर्थमिति ख्यातमश्वमेधफलप्रदम् ॥२॥
ब्रह्मा चकार तत्रैव चाऽश्वमेधं सुरैः समम्। ऋषिभिश्च स्वयं होता दक्षो मान्यपुरस्कृतः ॥३॥
संयोज्य विधिवद्देवान् स्वेषु स्वेषु च कर्मसु। चन्द्रार्कौ साक्षिणौ कृत्वाऽतर्पयत् स्वशनैर्हि तान्[2] ॥४॥
ब्रह्मणा स्थापितं लिङ्गं राजतं पूजितं मुदा[3]। विष्णुश्च काञ्चनं लिङ्गं रुद्रस्ताम्रमयं तथा ॥५॥
इन्द्रनीलमयं शक्रो दिक्पालाश्च[4] तथाविधम्। पद्मरागमयं सूर्यः चन्द्रकान्तमयं[5] विधुः ॥६॥
संस्थाप्य विधिवल्लिङ्गं तत्र सस्नुः पुनः सुराः। चन्द्रार्कौ तारका वह्निर्ब्रह्मविष्णुमहेश्वराः ॥७॥
शक्रो हुताशनः कालो नैर्ऋतो जलपोऽनिलः। नारदश्च्यवनो व्यासः सप्तर्षयोऽपरे तथा ॥८॥
अप्सरा मातरो देव्यो व्योमगाः सिद्धचारणाः। गन्धर्वाः किन्नरा विप्र रवौ सङ्क्रमणे मुदा ॥९॥
माघशुक्लस्य सप्तम्यां सस्नुस्तीर्थे ह्यजाह्वये। ददुर्द्रव्याणि विप्रेभ्यो गा वासांसि हिरण्यकम्[6] ॥१०॥
महादानानि रत्नानि पदार्थान् स्वप्रियानपि[7]। एवं कृत्वाऽश्वमेधं संस्थाप्य लिङ्गं पितामहः ॥११॥
न मुञ्चति हि तत्तीर्थं ब्रह्मतीर्थं ततः स्मृतम्। स्नात्वा संस्थाप्य[8] लिङ्गानि सर्वलोका ययुः स्वकम् ॥१२॥

---

अध्याय – ६६

## ब्रह्मतीर्थको महिमा

अगस्त्य मुनिले भन्नुभयो – हे कार्तिक स्वामी ! गण्डकीको सङ्गममा रहेका तीर्थहरूको माहात्म्य सुनेर ब्रह्मतीर्थको प्रसङ्ग सुन्न यो मन लालायित छ ॥१॥

कार्तिक स्वामीले भन्नुभयो – विश्वप्रसिद्ध धर्मधारा र विश्वधाराको सङ्गमस्थानमा अश्वमेध यज्ञ गरेको फल दिने ब्रह्मतीर्थ नामले प्रसिद्ध तीर्थ छ। त्यस ठाउँमा देवता, यक्ष र ऋषिहरूका साथ ब्रह्माले अश्वमेध यज्ञ गर्नुभएको थियो। सम्मान्य दक्षप्रजापति स्वयम् होता हुनुहुन्थ्यो। ब्रह्माजीले देवताहरूलाई विधिपूर्वक आ–आफ्नो काममा खटाउनुभयो। सूर्य र चन्द्रमालाई साक्षी राखेर तिनीहरूलाई भोजनले तृप्त तुल्याउनुभयो। ब्रह्माले भक्तिपूर्वक पूजा गरी चाँदीको लिङ्ग स्थापना गर्नुभयो। विष्णुले सुनको र रुद्रले तामाको लिङ्ग स्थापना गर्नुयभयो। इन्द्रले इन्द्रनीलमणिको लिङ्ग र अरू दिक्पालहरूले त्यस्तै किसिमका लिङ्गहरूको स्थापना गरे। सूर्यले पद्मरागमणिको लिङ्ग स्थापना गरे भने चन्द्रमाले चन्द्रकान्तमणिको लिङ्ग स्थापना गरे ॥२–६॥

हे अगस्त्य मुनि ! त्यहाँ विधिपूर्वक लिङ्गको स्थापना गरेर सङ्क्रान्तिका दिन देवताहरू, सूर्य, चन्द्रमा, नक्षत्रहरू, अग्नि, ब्रह्मा, विष्णु, महेश्वर, इन्द्र, यम, निर्ऋति, वरुण, वायु, नारद, च्यवन, व्यास, सप्तर्षि, अप्सरा, विभिन्न मातृकाहरू, आकाशमा हिँड्ने सिद्ध, चारण, गन्धर्व र किन्नरहरूले आनन्दसित स्नान गरे। तिनीहरूले माघशुक्ल सप्तमीका दिन ब्रह्मतीर्थमा स्नान गरेर ब्राह्मणहरूलाई द्रव्य, गाई, सुन र लुगा दान गरे। आफूलाई इच्छा लागेको महादान, रत्नदान गरेर अश्वमेध यज्ञ गरी ब्रह्माले शिवलिङ्गको स्थापना गर्नुभयो। सबै लोकवासीहरू त्यहाँ लिङ्गको स्थापना गरेर आ–आफ्नो स्थानमा गए पनि ब्रह्माजीले आजसम्म त्यो तीर्थ छाड्नुभएको छैन। त्यसैले त्यस तीर्थलाई ब्रह्मतीर्थ भनिएको हो। हे अगस्त्य मुनि ! म त्यस तीर्थको माहात्म्य बताउँछु, सुन्नुहोस् ॥७–१२½॥

---

१. संमीलने इति न.सं.पु.पाठः।
२. स्वशनैस्तर्पयन् हि तान् इति न.सं.पु.पाठः।
३. भक्त्यार्चनैर्हि राजतम् इति न.सं.पु.पाठः।
४. दिग्पतयश्च इति न.सं.पु.पाठः।
५. स्वकं मणिमयम् इति न.सं.पु.पाठः।
६. गावो हिरण्यवासस इति न.सं.पु.पाठः।
७. प्रोद्दिश्य स्वेप्सितान् तदा इति न.सं.पु.पाठः।
८. स्थाप्याशु इति न.सं.पु.पाठः।

ब्रह्मतीर्थस्य माहात्म्यं शृणु विप्र वदाम्यहम्। रवौ सङ्क्रमणे माघे मकराख्ये कलानिधौ ॥१३॥
तिस्रः कोट्यर्द्धकोटीनां तीर्थानां तत्र संयुतिः[९]। स्नात्वाऽत्र प्राग्दिवं याति सदेहो नाऽत्र संशयः ॥१४॥
त्रेतायां पैतृकं गच्छेद् द्वापरे वत्सरान्तरे। कलौ सकृन्नरः स्नात्वा परित्यज्य कलेवरम् ॥१५॥
भुक्त्वा[१०] यथेप्सितान् भोगान् स यास्यति परां गतिम्। ब्रह्मक्षेत्रे महातीर्थे यत्र कुत्रापि चाऽप्लवेत् ॥१६॥
अश्वमेधफलं विद्यान्मकरस्थे दिवाकरे। हव्यकव्यार्च्चनैः[११] स्नाता तत्तोयैः श्रद्धया सकृत् ॥१७॥
अन्यत्र विहितादत्र शतैर्गुण्यं फलं भवेत्[१२]। पितॄनुद्दिश्य यो विप्रान् भोजयेच्छ्रद्धया मुने ॥१८॥
त्रिसप्तकुलमुद्धृत्य स व्रजेत्परमं पदम्। हिरण्यं वाससी गाञ्च घृतमन्नञ्च कम्बलम्[१३] ॥१९॥
मकरस्थे रवौ दत्त्वा चाक्षयं फलमश्नुते। शृणु कश्चित्पुरा मुक्तः पापीयानपि कुम्भज ॥२०॥
हिरण्याचलशृङ्गे[१४] च ह्यासीन्म्लेच्छो धनुर्धरः। अरण्येचरहिंसात्मा व्यङ्गुर्नाम वनेचरः ॥२१॥
एकदा दिवसे म्लेच्छो ह्यगमन्मृगयावनम्। अहनत् पत्रिणा कोलं कन्दरायां सुनिर्दयः ॥२२॥
बाणाघातव्यथातप्ततृषार्तो मत्तशूकरः[१५]। सत्वरं तीरमासाद्य ब्रह्मतीर्थे जलं पपौ ॥२३॥
तृप्तोऽवदत् मनस्वी यो हतवान् मां निरागसम्[१६]। परत्र तमहं हन्ता भविष्येऽसून् जहौ ब्रुवन् ॥२४॥
व्यङ्गुरादाय तन्मांसं वसतिं चागमत्स्वकाम्। देहान्ते लब्धवान्[१७] सोऽपि मृगदेहं तदेनसः ॥२५॥

---

माघको सूर्य सङ्क्रान्तिका दिन मकर राशिमा चन्द्रमा रहेको बेलामा सत्य युगमा साँढे तीन करोड तीर्थको त्यहाँ समागम हुन्छ। त्यहाँ स्नान गर्नाले मानिस शरीरैसित स्वर्ग जान्छ, यसमा शङ्का छैन। त्रेतामा स्नान गर्नाले मात्र पनि मानिस तुरुन्तै पितृलोक जान्छ। द्वापर युगमा एकवर्षसम्म स्नान गऱ्यो भने त्यही फल प्राप्त हुन्छ। कलियुगमा एकपटक मात्रै भए पनि स्नान गऱ्यो भने शरीर त्याग गरेपछि मानिस पितृलोक जान्छ। ब्रह्मक्षेत्र नाम गरेको महातीर्थमा जुनसुकै समयमा स्नान गरे पनि मानिसले आफूलाई इच्छा लागेको सुखभोग गरेर अन्त्यमा परमगतिलाई प्राप्त गर्छ। मकर राशिमा सूर्य भएको बेला ब्रह्मतीर्थका जलले श्रद्धापूर्वक स्नान गरेर हव्यकव्यद्वारा देवता र पितृलाई अर्चना गऱ्यो भने त्यसले अश्वमेध यज्ञ गरेको फल पाउँछ ॥१३–१७॥

हे अगस्त्य मुनि ! पितृलाई उद्देश्य बनाएर यस ठाउँमा जुन मानिसले श्रद्धापूर्वक ब्राह्मणलाई भोजन गराउँछ, त्यसले अन्त गरेको भन्दा सयगुणा बढी फल पाउँछ भन्ने कुरा बुझ्नुहोस् ॥१८॥ जसले त्यस ठाउँमा सुन, लुगा, गाई, अन्न, घिउ र कम्बल दान गर्छ, त्यसले एक्काइस कुलको उद्धार गरेर परमपद प्राप्त गर्छ। मकर राशिमा सूर्य भएको बेलामा गरेको सम्पूर्ण कामको फल अक्षय हुन्छ ॥१८–१९½॥

हे अगस्त्य मुनि ! अघि त्यसो गर्नाले कुनै पापी व्यक्ति मुक्त भएको थियो, सुन्नुहोस्। अघि हिरण्याचलको टाकुरामा बस्ने, धनुर्धारी, पशु हिंसा गर्ने व्यङ्गु नाम गरेको कुनै म्लेच्छ थियो। कुनै दिन त्यो म्लेच्छ शिकारका लागि वनमा गयो र बाणले ओडारमा बसेको बँदेललाई निर्दयी भएर हिर्कायो ॥२२॥

बाणको पीडाले विह्वल भएको र तिर्खाले आत्तिएर बौलाएको त्यो बँदेलले तुरुन्त ब्रह्मतीर्थको तीरमा आएर जल पियो। त्यो मनस्वी बँदेल तृप्त भयो र निरपराध मलाई जसले माऱ्यो त्यसलाई अर्को जुनीमा म मार्नेछु भन्दै उसले प्राण त्याग गऱ्यो। व्यङ्गु नाम गरेको त्यो शिकारी पनि त्यो बँदेलको मासु लिएर आफ्नो वासस्थानमा गयो। त्यस अपराधले गर्दा मरेपछि उसले मृगको शरीर लियो ॥२५॥

---

९. संयुतम् इति न.सं.पु.पाठः।
१०. इत्थम् इति न.सं.पु.पाठः।
११. हव्यकव्यार्चने इति न.सं.पु.पाठः।
१२. अन्यथात्र शतं गौण्यं फलं विद्याद्धि मानव इति न.सं.पु.पाठः।
१३. तद् घृतकम्बलम् इति न.सं.पु.पाठः।
१४. हिरण्याचलसानौ इति न.सं.पु.पाठः।
१५. शरव्यथयासक्तस्तृषार्त्तोन्मत्तशूकर इति न.सं.पु.पाठः।
१६ तृप्तो भवेन्मनस्वी स मां निरागासिनं हत इति न.सं.पु.पाठः।
१७. अलभत् इति न.सं.पु.पाठः ॥

कोलो व्याघ्रोऽभवत्तत्र सर्वसत्त्वभयावहः। धर्मधाराजलं प्राश्य चचार निर्जने वने ॥२६॥
एकदा दिवसे व्याघ्रः प्राप्तो मृगसमाजकम्। तत्र त्रिशूलगङ्गार्णः पीत्वा प्रतिगतः पुनः ॥२७॥
व्याघ्रोऽवदन्मृगञ्चेति दैवयोगात्क्षुधार्दितः। अहो भाग्यमहो भोग्यं भक्षामीहागतं मम ॥२८॥
इत्याकर्ण्य वचस्तत्र व्याघ्रगर्जोद्भवं मृगः। भयार्तः मृदुचित्तोऽसौ[१८] ह्यवोचद् द्वीपिनं वचः ॥२९॥

मृग उवाच

त्वं मित्रं त्वं गतिर्नो हि त्राता पालोऽत्र वासिनाम्। मृगेन्द्रस्त्वं महासौम्यः शरणागतरक्षकः ॥३०॥
मैवं व्यापादय व्याघ्र ज्ञात्वा स्वस्याऽन्तिकागतम्[१९]। शरणागतहन्ता चेत्किल्बिषं चाऽश्नुते परम् ॥३१॥

व्याघ्र उवाच

भवाँश्चेत् किल्विषैस्त्रस्तः स्मर्यतां यत्पुरा कृतम्। कोलरूपस्त्वयाऽहं प्राङ् निर्दयं पत्त्रिणा हतः ॥३२॥
श्रोतव्यं ते कथं वाक्यमस्मच्छ्रवणविप्रियम् ॥३३॥
शृणु मृगाधमेदानीमभिधास्ये यथोदितम् ॥३४॥
त्वयैकदा हतोऽत्राऽहं सुनिर्दयं हि पत्रिणा। शतधा त्वां हनिष्यामि भूयो जन्मनि जन्मनि ॥३५॥

मृग उवाच

कथं व्यापादितो व्याघ्र त्वमनेन शरीरिणा। तृणाशनेन मांसासी त्रासिना चपलेन च[२०] ॥३६॥
केन श्रद्धीयते तात तृणाशनेन कानने। ततो व्याघ्रो हि मांसाशी हतश्चित्रोदितं वचः ॥३७॥

---

उता बँदेल सबै प्राणीलाई तर्साउने बाघ भएर जन्मियो, धर्मधाराको पानी पिएर मानिस नभएको वनमा त्यो घुम्न थाल्यो। कुनै दिन बाघले त्रिशूलीगङ्गामा जल पिएर फर्किएको मृगको बथान नजिकै पुग्यो र भन्यो – मेरो ठूलो भाग्य रहेछ। भोकाएको अवस्थामा संयोगले यता आउन लागेका मृगलाई मैले खान पाउने भएँ। बाघको गर्जनबाट पैदा भएको यो कुरा सुनेर सोझो मृग तर्सियो र बाघलाई भन्न थाल्यो ॥२६–२९॥

मृगले भन्यो – हे मित्र ! तपाईं नै हाम्रो गति हुनुहुन्छ, तपाईं नै रक्षक हुनुहुन्छ, यस ठाउँमा बस्ने हामीहरूको पालक पनि तपाईं नै हुनुहुन्छ। हे महासौम्य ! तपाईं मृगहरूको राजा हुनुहुन्छ, शरणागतका रक्षक हुनुहुन्छ। यो कुरा बुझेर तपाईंको नजिकै आएको मलाई नमार्नुहोस्। शरण परेकालाई जसले मार्छ त्यसले ठूलो पापको फल भोग्नुपर्छ ॥३०–३१॥

बाघले भन्यो – हे मृग ! तँलाई पापबाट त्यत्रो डर लाग्छ भने पहिले तैंले जे काम गरेको थिइस् त्यो सम्झी। तैंले बँदेलका रूपमा रहेको मलाई त्यतिखेर निर्दयी भएर बाणले हिर्काएको थिइस्। अहिले मेरो कानलाई मन नपर्ने तेरो वाक्य म कसरी सुनूँ ? हे अधम मृग ! म पहिलेको वृत्तान्त बताउँछु, सुन्। तैंले एकपटक बाणले निर्दयी भएर मलाई मारेको थिइस्, म तँलाई सय पटकसम्म प्रत्येक जन्ममा मार्नेछु ॥३२–३४॥

मृगले भन्यो – हे बाघ ! चञ्चल भएर घाँस खाने र डरपोक यो मृगको शरीर लिएको मैले मासु खाने डरलाग्दो तिमीलाई कसरी मारेँ ? वनमा घाँस खाने मृगले मासु खाने सिंहलाई माऱ्यो भनेर कसले पत्याउँछ ? यो अचम्मलाग्दो कुरा छ ॥३५–३७॥

---

१८. धर्षितवान्पुनः सौम्य इति न.सं.पु.पाठः। १९. तवान्तिकागतम् इति न.सं.पु.पाठः।
२०. चपलं त्रासिना भृशम् इति न.सं.पु.पाठः।

तस्मिन्नवसरे तीर्थेऽपश्यतां मृगद्वीपिनौ। स्थिते सङ्क्रमणे सूर्ये देवर्षिणो जलाप्लवान् ॥३८॥
तस्मिन् तीर्थेऽमराः सस्नुः सर्वपर्वसु यत्नतः। जपादिकं परित्यज्य सर्वमासेषु चाप्लुताः ॥३९॥
स्नातकेभ्यो ददुर्दानान्युद्दिश्य भुक्तिमुक्तिकम्। अचलायाञ्च सप्तम्यां तीरोषिताः सुरप्रियाः ॥४०॥
स्नाताय द्विजवर्याय माल्यगन्धादिकं ददुः[२१]। यथा कामं ददुर्भक्त्या माल्यं गन्धोपहारकम् ॥४१॥
प्रीयन्तां नो हरो विष्णुरार्या धर्मेति भावतः[२२]। हिमाचले ददृशतुः[२३] ब्रह्मतीर्थप्रवाहतः ॥४२॥
प्रदीपफलमाल्यानि वहन्तौ स्थगितव्रजौ। चित्रात्मानौ ततः सार्द्धमीयतुः प्रेक्षितुं हि तत् ॥४३॥
किमितीति ब्रुवाणौ तौ निर्विवादौ बभूवतुः[२४]। ददृशतुः[२५] सुरान् सर्वान् स्नातान् देवार्च्चकानपि ॥४४॥
तौ स्थगितगती तीर्थे विस्मयसाध्वसान्वितौ। तौ च प्रोवाच कालोऽपि सर्वसत्त्वविभीषणः ॥४५॥
देवसंसदि चित्तज्ञः ब्रह्मदण्डेन[२६] तर्जयन् ॥४६॥

काल उवाच

भो तृणाशन भो व्याघ्र क्षीणदेहौ मलीमसौ। इदानीं शुष्ककण्ठौ च वदतं कारणं द्रुतम्[२७] ॥४७॥

स्कन्द उवाच

इत्याकर्ण्य वचस्तस्य विसाध्वसस्तमीक्षिवान्। प्रोवाचेदं मृगः सुष्ठु ह्यभिवादनपूर्वकम् ॥४८॥

मृग उवाच

नतिरस्तु त्वयि देवे श्रीमच्चरणयुग्मयोः। शृणु देव महच्चित्रं संवादं नोऽत्र साम्प्रतम् ॥४९॥
मया तृणाशनेनायं मांसाहारी हतो विभो। केन प्रतीयते देव यथार्थं[२८] वद नः प्रभो ॥५०॥

---

यसै समयमा त्यस तीर्थमा सूर्य सङ्क्रान्तिका दिन ती दुबैले स्नान गर्न लागेका देवता र ऋषिहरूलाई देखे। त्यस तीर्थमा सबै पर्वमा देवताहरूले स्नान गर्थे। उनीहरू सबै मासमा जप, तप आदिलाई छोडेर त्यहाँ डुब्दथे। अचला सप्तमी तिथिमा तीरमा बसेका देवता र ऋषिले भुक्ति र मुक्तिका निमित्त स्नान गर्ने, ब्राह्मणलाई दान, माला, चन्दन र उपहार दिन्थे। हामीमाथि महादेव, विष्णु, पार्वती र धर्म प्रसन्न हुनुहोस् भन्दै उनीहरूले बत्ती, फल, माला बगाए ॥३८–४१½॥

हिमालय पहाडको फेदीमा ब्रह्मतीर्थको प्रवाहबाट बग्दै आएको त्यो दृश्य टक्क उभिएका ती दुई वनप्राणीहरूले देखेर छक्क परे। त्यसपछि अचम्म मान्दै त्यो दृश्य हेर्न दुबै गए। त्यसपछि ती दुई के हो भनेर विवाद गर्न छाडे। अनि उनीहरूले स्नान गरेर पूजा गर्न लागेका सम्पूर्ण देवताहरूलाई देखे। आश्चर्य र हडबडले युक्त भएका ती दुई वनप्राणीहरूले त्यस तीर्थमा आफ्नो गतिलाई रोके। त्यसैबेला सबै प्राणीहरूलाई तर्साउने कालले उपस्थित भएर देवताहरूको माझमा ब्रह्मदण्ड देखाउँदै तिनीहरूलाई भन्न थाले ॥४२–४६॥

कालले भने – हे घाँस खाने मृग हो ! हे बाघ ! तिमीहरू दुब्लाएका मलिन र घाँटी सुकेका छौ, त्यसको कारण के हो ? मलाई भन ॥४७॥

कार्तिक स्वामीले भन्नुभयो – कालको यस्तो कुरा सुनेर नहड्बडाइकन प्रणाम गर्दै मृगले शान्त भएर भन्यो ॥४८॥

मृगले भन्यो – हजुरको चरणारविन्दमा मेरो नमस्कार छ। हामी दुईको अहिले जुन आश्चर्यजनक संवाद भएको छ, त्यो कुरा सुन्नुहोस्। हे प्रभु ! घाँस खाने मैले मासु खाने बाघलाई कसरी मारेँ ? हे हजुर ! यो कुरा कसले पत्याउँछ ? यथार्थ कुरा मलाई बताइदिनुहोस् ॥४९–५०॥

---

२१. ब्राह्मे स्नाता ददुर्वेण्याघृतपूर्णान्प्रदीपकान् इति न.सं.पु.पाठः।
२२. प्रीयतां नो हरो विष्णुरार्याधर्म इति ब्रुवन् इति न.सं.पु.पाठः।
२३. ददृशतुर्हिमाद्यन्ते इति न.सं.पु.पाठः।
२४. किमितीति ब्रुवन्तत्र विवादानि समत्यजन् इति न.सं.पु.पाठः।
२५. ददर्शतु इति न.सं.पु.पाठः।
२६. ब्रह्मदण्डं हि इति न.सं.पु.पाठः।
२७. वदं तद्धेतुकं मयि इति न.सं.पु.पाठः।
२८ याथार्थ्यम् इति न.सं.पु.पाठः।

व्याघ्र उवाच

पूर्वजन्मनि भो व्याघ्ररूपेणानेन पत्रिणा[२९] । कोलरूपो ह्यहं तात निर्दयं निहतः पुरा ॥५१॥

एतस्याः जीवनं प्राश्य ह्यजहञ्चात्र तद्वपुः । अत्र जन्मान्तरं जातं तज्जलस्पर्शनादिदम्[३०] ॥५२॥

सर्वं तद्धि भवान् वेत्ता किंविधेयमतः परम् । साक्षी चेहैव सर्वेषां त्वं शुभाशुभकर्मणाम् ॥५३॥

काल उवाच

व्याघ्रेणोक्तमिदं सर्वं तथ्यमेव न संशयः । हतवानसि पूर्वं त्वमिदानीं[३१] मृगदेहभृत् ॥५४॥

मृग उवाच

लोकपालेश्वरो भूत्वा सर्वसत्त्वदयानिधिः । साक्षी व्याघ्राद्विभीतः सन् कथं मिथ्या वदेत् भवान्[३२] ॥५५॥

समदृष्टिर्भवेत्स्वामी यथार्थवाक् सुहृद् बुधः । समानः सर्वसत्त्वेषु भुक्तेर्मुक्तेश्च भाजनम्[३३] ॥५६॥

यम उवाच

किमेवं कत्थसे[३४] मूर्ख शृणु मद्वचनं ध्रुवम् । जन्तूनां नापराद्धानां नाहं शासितुमीश्वरः[३५] ॥५७॥

भूमिपतिस्तथाभूमौ ह्यनपराधिनां यदा । शासकस्तमहं शास्ता भवामीह परत्रके ॥५८॥

परत्र चेह जन्तूनामनपराधिनां प्रभुः । रक्षको हि तदन्यस्कस्तेषां शासितुमीश्वरः ॥५९॥

अनिर्लिप्तैनसां नृणां कुत आयाति भीषणम् । साक्षादपीश्वरो नैवं तच्छासने प्रभुर्भवेत् ॥६०॥

स्कन्द उवाच

श्रुत्वैतद्वचनं चैव लोकपालमुखाच्च्युतम् । हर्षाद् भूत इवात्रस्तः प्रश्नं चक्रे तमन्ततः ॥६१॥

---

बाघले भन्यो – हे प्रभु ! यो पहिले व्याधा भएको थियो । त्यसले मलाई बाणले निर्दयी बनेर अघि मारेको थियो । यिनै गङ्गाको जल पिएर मैले त्यहाँ शरीर छोडेको थिएँ, त्यही जल स्पर्श गरेको हुनाले म फेरि अर्को जुनीमा यहीं पैदा भएँ । हजुर सबै कुरा जान्नुहुन्छ, हजुर खराब–असल सबै कुराका साक्षी यहीं नै हुनुहुन्छ, म के गरूँ ? ॥५१–५३॥

कालले भन्यो – हे मृगको रूप लिने व्याधा ! बाघले भनेको सबै कुरा सत्य हो, यसमा शङ्का छैन । तिमीले पूर्वजन्ममा यसलाई मारेकै थियौ ॥५४॥

मृगले भन्यो – सबै प्राणीमाथि दया गर्ने लोकपालका ईश्वर र साक्षी भईकन पनि बाघदेखि डराएर हजुरले कसरी यस्तो कुरा गर्नुभयो ? स्वामी भनेका त निष्पक्ष हुन्छन्, सत्य बोल्छन्, मित्र र विद्वान् हुन्छन्, सबै प्राणीलाई भुक्ति र मुक्ति दिन्छन् ॥५५–५६॥

यमराजले भने – हे मूर्ख ! मसित किन वक्वक् गर्छस् ? मेरो कुरा सुन् – निरपराधी प्राणीलाई दण्ड दिन म सक्दिनँ । जब पृथ्वीमा राजाले निरपराधीलाई दण्ड दिन्छ, त्यस्ता राजालाई परलोकमा म शासन गर्छु अर्थात् दण्ड दिन्छु । परत्र अथवा वरत्र निरपराधीहरूको रक्षा गर्ने अर्कै प्रभु हुनुहुन्छ । उहाँ बाहेक तिमीहरूलाई शासन गर्न अरू कसले सक्छ र ? । पाप नगरेका मानिसका सामु डर कहाँबाट आउँछ ? तिनीहरूलाई दण्ड दिन त साक्षात् ईश्वर प्रभु पनि सामर्थ हुनुहुन्न ॥५७–६०॥

कार्तिक स्वामीले भन्नुभयो – यमराजको मुखबाट निस्किएको यो वचन सुनेर हर्ष र अचम्म भए झैं गरी नडराईकन मृगले अन्त्यमा यमराजसँग प्रश्न गऱ्यो ॥६१॥

---

२९. पूर्वप्रादुर्भवेन व्याघ्ररूपेण पत्रिणा इति न.सं.पु.पाठः ।

३०. इह जन्मान्तरे भूयस्तज्जलस्पर्शनाद्भवम् इति न.सं.पु.पाठः ।

३१. पूर्वेऽस्मिन्त्वमिदम् इति न.सं.पु.पाठः ।

३२. सन्निदमुक्तं कथं विभो इति न.सं.पु.पाठः ।

३३. त्रिविधः सर्वसत्त्वेषु भुक्तिमुक्तेः सभाजन इति न.सं.पु.पाठः ।

३४. मामैवं कत्थ्यसे इति न.सं.पु.पाठः ।

३५. नीरपराधिनां जन्तोर्नाहं शासितुमीश्वर इति न.सं.पु.पाठः ।

मृग उवाच

चित्रं मे जायते स्वान्ते भवतोक्तं निशम्य तत्। मानुषं देहमासाद्य पशुरूपः कथं भवेत् ॥६२॥
केनापि निहतं मित्रं पूर्वं लोकाश्च तर्जिताः[३६]। तत् कथं ज्ञायते[३७] तात मया तत्रऽभिधीयताम् ॥६३॥

यम उवाच।

यो नाराधितवान्मर्त्यः पञ्चास्यं पञ्चदेवताः। पशुदेहं समासाद्य भ्रमति शैलकाननम् ॥६४॥
तीर्थाभिषेचनैर्हीना नराः पुण्यविवर्जिताः। त एव पशवो भूत्वा बहुयोनिषु सम्भवाः ॥६५॥
कृमिकीटपतङ्गानां पशूनाञ्चैव पक्षिणाम्। नराणां क्रमशो योनिं यल्लभेत निबोध तत्[३८] ॥६६॥
कृमीणां नवलक्षं स्यात्त्रिंशल्लक्षं पतत्त्रिणाम्। विंशतिः स्थावराणामेकादश[३९] जलौकसाम् ॥६७॥
पशूनां दशलक्षञ्च नृणाञ्च तूर्यलक्षकम्। योनयः प्राणिनामेता लभ्यन्ते क्रमशो मृगः[४०] ॥६८॥
ततो नरवपुः प्राप्य धर्माधर्मयुतो नरः। यदि धर्मी स पूर्णायुरक्षय[४१] स्वर्गमाप्नुयात् ॥६९॥
स्वल्पायुरपरैर्युक्तो यातनायुग्व्रजेदधः। अध्यासते हि स दुःखार्तो क्रमात् नरकसद्मनि ॥७०॥
भुक्त्वा भोग्यं यथायोग्यं मानुषवर्षमानतः। पुनस्ततः स योनिषु सर्वासु क्रमशो नरः ॥७१॥
समुद्भूतो द्विजातीनां कुलधर्मान् लभेत सः[४२]। ज्ञानासक्तः शुचिर्धीमान् तपःशीलगुणान्वितः ॥७२॥
तीर्थस्नायी शिवध्यायी निर्वाणं प्राप्नुयाद् द्विजः ॥७३॥

मृग उवाच

केन प्रतीयते तात एतत्सर्वं मयाधुना। अज्ञानकूपमग्नेन पृच्छे[४३] तृष्णार्त्तदेहिनाम् ॥७४॥
भवतोक्तमिदं सर्वं निशम्य भीतवान् भृशम्। देहः केवलदुःखाय मृत्युभाजां प्रतीयते[४४] ॥७५॥

---

मृगले भन्यो – हजुरले भनेको कुरा सुनेर मलाई अत्यन्त अचम्म लागेको छ। त्यो व्याधा मानिसको शरीर पाएर पशु कसरी भयो ?। यद्यपि पहिले लोकलाई तर्साउँदै यसलाई मैले मारेछु। यो कुरा मैले कसरी पत्याउने ? भन्नुहोस् ॥६२-६३॥

यमराजले भने – जुन मानिसले पाँचवटा देवतास्वरु भएका पञ्चमुखी पशुपतिनाथको आराधना गरेको छैन, त्यो मानिसले पशुरूप भएर पहाडको जङ्गलमा बस्नुपर्छ। जुन मानिसले तीर्थमा स्नान गरेका छैनन् र पुण्य कमाएका छैनन्, तिनै मानिसहरू विभिन्न योनिमा पैदा भएर पशु बन्न पुग्छन् ॥६२॥ त्यसले क्रमैले कमिला, कीरा, फट्याङ्ग्रा, पशुपक्षी र मानिसको योनिमा जन्म लिन्छ भन्ने कुरा बुझ ॥६४-६६॥

हे मृग ! नौ लाख कीरा, तीस लाख पक्षी, बीस लाख रुख, एघार लाख जलजन्तु, दश लाख पशुयोनि बितेपछि चार लाख मानिसको जुनी बिताउनुपर्छ। यी योनिहरू प्राणीहरूले क्रमशः प्राप्त गर्छन्। त्यसपछि धर्म र अधर्मले युक्त भएको मानिसको चोला प्राप्त हुन्छ। यदि धर्मयुक्त र पूर्ण आयु भएर मनुष्य चोला लिएको छ भने त्यसले अविनाशी स्वर्ग पाउँछ। यदि अधर्मले युक्त भएर थोरै आयु लिई मनुष्य योनिमा जन्म लिएको छ भने त्यसले ठूलो यातना भोगेर अधोगति प्राप्त गर्छ र दुःखतप्त भएर नरकमा वास गर्छ। मानिसको वर्ष प्रमाण अनुसार भोग्नुपर्ने सबै कर्मको भोग गरेर त्यो जीव क्रमैले सबै योनि पार गरी जन्मिएर ब्राह्मणको कुल र धर्मलाई प्राप्त गर्छ। अनि ज्ञानी, पवित्र, बुद्धिमान्, तपस्वी, शिवचिन्तक र तीर्थको स्नातक बनेपछि उसले मुक्ति पाउँछ ॥६७-७३॥

मृगले भन्यो – हे भगवन् ! अज्ञानको कुवामा डुबेको र तृष्णायुक्त शरीर भएको मैले हजुरले भन्नुभएको यो सबै कुरा कसरी बुझौं ?। हजुरले भनेको यो सबै कुरा सुनेर म अत्यन्त डराएको छु। यो शरीर खालि यातना, मृत्यु, जन्म र दुःखका निमित्त रहेछ ॥७४-७५॥

---

३६. यद्यपि हतवान्पूर्वं मित्रं लोकाँश्च तर्जयन् इति न.सं.पु.पाठः।
३७. कथं प्रतीयते इति न.सं.पु.पाठः।
३८. स लभेत्तन्निबोध मे इति न.सं.पु.पाठः।
३९. स्थावराणाञ्चैकादशञ्च इति न.सं.पु.पाठः।
४०. एतेषां जीविनां योन्यः प्रलभेत्क्रमशो मृगम् इति न.सं.पु.पाठः।
४१. धर्मसंयुक्तपूर्णायुरक्षयम् इति न.सं.पु.पाठः।
४२. लभेत्क्रमात् इति न.सं.पु.पाठः।
४३. प्रश्ने इति न.सं.पु.पाठः।
४४. केवलोऽयं हि दुःखाय यातनामृत्युजन्मने इति न.सं.पु.पाठः।

यम उवाच

पीत्वैव केवलं देहः[४५] सर्वपापैः प्रमुच्यते। एतत्तीर्थजलं[४६] शश्वत्सर्वदेवाभिकाङ्क्षितम् ॥७६॥
ब्रह्मतीर्थमिदं पुण्यं मनसा वाञ्छितप्रदम्। पश्य देवर्षिभिः स्नातं चतुर्वर्गफलप्रदम् ॥७७॥
एतत्तीर्थजलं स्पृष्ट्वा[४७] पश्य दिवङ्गतान्मृग। कृमिकीटपतङ्गान् वै विमानैर्गच्छतः[४८] सुखम् ॥७८॥
पशुपक्षिनरा मूढा लता वृक्षास्तृणादयः। तत्तत्कलेवरं त्यक्त्वा[४९] प्राप्स्यन्ति त्रिदिवं मुदा ॥७९॥
दानधर्मव्रतैर्युक्तास्तत्र स्नात्वा सुराङ्गनाः। दिव्ययानैः समायान्ति पश्य किम्पुरुषाङ्गनाः ॥८०॥
मानुषा मुनयो धन्यास्तदङ्गना विकिल्विषाः। उच्चरन्ति नभोयानैरुद्धृत्य स्वकुलं बहु ॥८१॥

स्कन्द उवाच

सोऽपश्यत् सकलाँल्लोकाञ्चतुर्विधोद्भवान्मुने। दिव्यदेहं समासाद्य नभोयानैः प्रगच्छतः ॥८२॥
भूयः पप्रच्छ पैत्रेशं चित्रात्मा व्याकुलो मृगः। प्रणम्य गौरवाच्छश्वदात्मोद्धरणहेतवे ॥८३॥
त्वं नाथस्त्वं गुरुस्तातः साक्षी त्वं प्राणिनां[५०] यमः। नमामि[५१] चरणौ धातर्धर्मस्थानां दयाकर ॥८४॥
धर्मसेतुलङ्घनानां पापिनां शासको भवान्। नमस्ते यमरूपाय साक्षिणे सर्वप्राणिनाम्[५२] ॥८५॥
श्रुत्वा भवन्मुखाम्भोजाच्च्युतामृतकथां पराम्। तृप्यतः श्रवणे तात मानसं नैव मे तथा ॥८६॥
कथं तात विमोक्षोऽस्ति चैतेन वपुषा मम। तत्सर्वं हि वदोपायमत्यन्तं गर्हिताय मे[५३] ॥८७॥

---

यमराजले भने– हे मृग ! हेर सबै देवताहरूले रुचाएको यस तीर्थको जल पिउनाले मात्रै पनि यो शरीर सम्पूर्ण पापबाट मुक्त हुन्छ। यो पवित्र तीर्थले मनमा लागेको सम्पूर्ण इच्छा पूर्ण गरिदिन्छ। देवताहरू पनि यसैमा स्नान गर्छन्। यसले धर्म, अर्थ, काम र मोक्ष चारै पुरुषार्थ प्रदान गर्छ। हे मृग ! यस तीर्थको जलको स्पर्श गरेर यस ठाउँबाट विमान चढेर सुखपूर्वक स्वर्ग गएका कमिला, कीरा र फट्याङ्ग्रालाई हेर। यस तीर्थको जलको स्पर्शले गर्दा पशुपक्षी, मानिस र बुद्धि नभएका लहरा, रुख तथा घाँसहरू पन आफ्नो स्वरूपलाई छोडेर आनन्दसित स्वर्ग पुगेका छन् ॥७६–७९॥

यही ब्रह्मतीर्थमा स्नान गरेर दान, धर्म र व्रतहरू गर्ने देवताका स्त्रीहरू, किम्पुरुष र यक्षका पत्नीहरू सुन्दर विमानमा चढेर आउँदै गरेका छन्। हेर मानिस, ऋषिहरू तथा उनीहरूका स्त्रीजातिहरू धन्य छन् किनभने तिनीहरू पापरहित भएर आफ्नो धेरै कुलको उद्धार गर्दै विमानमा चढेर उडिरहेका छन् ॥८०–८१॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! दिव्य शरीर धारण गरेर विमानद्वारा उडिरहेका चारै किसिमका प्राणीहरूलाई त्यस मृगले देख्यो। त्यसपछि छक्क परेर हड्बडाउँदै त्यस मृगले आफ्नो उद्धारका निमित्त यमराजलाई नमस्कार गरेर एकपटक फेरि प्रश्न गऱ्यो। हजुर नै स्वामी हुनुहुन्छ, हजुर नै गुरु हुनुहुन्छ, हजुर नै बुबा हुनुहुन्छ। हे यमराज ! हजुर सबै प्राणीका साक्षी हुनुहुन्छ। हे धाता ! हे दयालु ! हजुर नै धर्मका स्थान हुनुहुन्छ, हजुरका चरणमा म नमस्कार गर्छु ॥८२–८४॥

जसले धर्मका निमित्त राखेको सेतुस्वरूप नियम वा वस्तुलाई नाश गर्छ, त्यस्ता पापीहरूको दण्डदाता हजुर नै हुनुहुन्छ। सम्पूर्ण प्राणीका साक्षी यमस्वरूप हजुरलाई नमस्कार छ। हजुरको मुखकमलबाट निस्किएको कथारूपी अमृत सुनेर मेरा दुई कान तथा मन तृप्त भएका छैनन्। हे प्रभु ! मेरो यो शरीरले मुक्ति पाउन सक्दैन, अत्यन्त निन्दित भएका मेरा निमित्त मुक्ति प्राप्त गर्ने सबै उपाय बताउनुहोस् ॥८५–८७॥

---

४५. पीतमात्रेण देहोऽयम् इति न.सं.पु.पाठः। ४६. एतत्तीर्थार्णसम् इति न.सं.पु.पाठः। ४७. स्पृश्य इति न.सं.पु.पाठः।
४८. विमानैर्यानत इति न.सं.पु.पाठः। ४९. त्यज्य इति न.सं.पु.पाठः। ५०. जीविनाम् इति न.सं.पु.पाठः।
५१. नमेऽहम् इति न.सं.पु.पाठः। ५२. सर्वजीविनाम् इति न.सं.पु.पाठः। ५३. च इति न.सं.पु.पाठः।

यम उवाच

मृगोत्तम मृगेन्द्र त्वमुपगम्याशु नारदम्। स्वं स्वं कुशलकं तत्र विजिज्ञासस्व[५४] मा चिरम् ॥८८॥

स्कन्द उवाच

इत्युपदिश्य धर्मात्मा व्याघ्राय च मृगाय च। तिरोदधे घटोद्भूत तयोः समक्षमम्बरे ॥८९॥

उपगम्याशु तौ तत्र नारदान्तिकमागतौ। त्यक्तत्रासौ महात्मानावूचतुर्मानुषं वचः ॥९०॥

मृगावूचतुः

नमो ब्राह्मणदेवाय सर्वज्ञाय द्विजन्मने। पितामहौरसार्याय चाविकृतहृदे नमः ॥९१॥

कथं स्यात् जगतस्त्राणं पशुदेहस्य मोचनम्[५५]। उपायं वद नो भूमन् बहुपापमलीमसौ ॥९२॥

स्कन्द उवाच

आकर्ण्य तद्वचोऽगस्त्य नारदो विस्मितोऽभवत्। नरवाचौ कथं चेमौ हीति चिन्ताकुलो मुनिः ॥९३॥

ब्रह्मतीर्थजलस्पर्शात्सौरैः सम्भाषणात्पुनः। नारदो ज्ञातवाँश्चेति ज्ञानयुक्तावुवाच सः ॥९४॥

नारद उवाच

एतत्तीर्थात्परं श्रेष्ठं नास्ति भूमण्डले मृग। सर्वेषां मुक्तिदं व्याघ्र चतुर्विधप्रसाधकम् ॥९५॥

स्नायतां खलु तीर्थेऽस्मिन्निमज्याशु त्रिवारकम्। तिसृभिर्भक्तिभिर्नत्त्वा हृद्यं काम्यं हि लभ्यते[५६] ॥९६॥

---

यमराजले भने – हे सिंह ! हे मृग ! तिमीहरू तुरुन्तै गएर नारदसँग आफ्नो भएको वृत्तान्त बताओ। उनीसँग कुशल प्रश्न गर, यसमा ढिलो नगर ॥८८॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! मृग र बाघलाई इति भनेर यमराज तिनीहरूका अगाडि नै आकाशमा अन्तर्धान हुनुभयो। त्यसपछि ती दुबैले त्रास छोडेर नारदको नजिकै गई उहाँसित मानिसको बोलीले भने ॥८९-९०॥

बाघ र मृगले भने – सम्पूर्ण कुरा जान्ने द्विजन्मा ब्राह्मणदेवलाई नमस्कार छ। हे आर्य ! ब्रह्माका सन्तान, विकृत हृदय नभएका हजुरलाई नमस्कार छ। हे तात ! धेरै पापले मलिन भएका यी दुई शरीरले संसारको बन्धनबाट कसरी मुक्ति पाउने ? हे महात्मा ! हजुरले उपाय बताइदिनुपर्‍यो ॥९१-९२॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! यस्तो तिनीहरूको बोली सुनेर नारद तीन छक्क पर्नुभयो। यिनीहरूले कसरी मानिसहरूको भाषा बोले भन्ने विषयमा उहाँ विचार गर्न लाग्नुभयो। ब्रह्मतीर्थको जलस्पर्श र कालसित भएको सम्भाषणबाट उनीहरू ज्ञानी भएका हुन् भन्ने कुरा थाहा पाएर नारदजी भन्न लाग्नुभयो ॥९३-९४॥

नारदले भन्नुभयो – हे मृग ! हे बाघ ! यो तीर्थभन्दा चारै किसिमको पुरुषार्थ सिद्ध गर्ने र सबैलाई मुक्ति दिने अर्को कुनै तीर्थ छैन। यस तीर्थमा तिमीहरू गएर तुरुन्त तीनपटक डुबुल्की मारेर स्नान गर। तीनै किसिमका भक्तिका साथ नमस्कार गर। त्यसपछि आफूले चाहेको फल प्राप्त गर्नेछौ ॥९५-९६॥

---

५४. पृच्छस्वाद्य च इति न.सं.पु.पाठः।

५५. संसारात्त्रायते तात कथमेतत्कलेवरौ इति न.सं.पु.पाठः।

५६. भक्तिभिस्त्रिविधैर्नत्वा हृद्यं काम्यं लभेत्परम् इति न.सं.पु.पाठः।

स्कन्द उवाच

आकर्ण्य तद्वचः सद्यो मुन्युपदेशतो हि तौ। त्रिवारं सस्नतुस्तस्मिन् त्रिविधभक्तिसंयुतौ ॥९७॥

तस्मिन्नवसरे तत्र यानमवततार च। तत्राधाय गणाः शैवाः शैवौ निन्युः क्षणाद्धि तौ ॥९८॥

पश्यन् वै विरजो नत्वा चित्रात्मा सरलो द्विज[५७]। पप्रच्छ नारदं शश्वत् किमिदमिति चित्रकम् ॥९९॥

नारद उवाच।

विरज व्रज मा चित्रं ब्रह्मतीर्थोद्भवे फले। एवमेव हि सर्वैस्तत्स्नात्वा लब्धं परं पदम् ॥१००॥

माहात्म्याद् धर्मधारायाः कश्चिन्मुक्तः पुराधमः। धर्मस्नानव्रतज्ञानैर्विहीनो राक्षसो द्विज ॥१०१॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे ब्रह्मतीर्थमाहात्म्यं नाम षट्षष्टितमोऽध्यायः ॥६६॥

---

कार्तिक स्वामीले भन्नुभयो – नारदमुनिको त्यस्तो कुरा सुनेर उनकै उपदेशअनुसार ती दुईले त्यहाँ गएर तीनै किसिमको भक्तिले युक्त भएर तीनपटक डुबुल्की मार्दै स्नान गरे। त्यसैबेला आकाशबाट विमान ओर्लियो। त्यहाँ रहेका शिवका गणहरूले ती दुईलाई विमानमा राखेर शिवलोक लगे। त्यसैबेला यो आश्चर्य देखेर छक्क परेका नारदका साथी विरजा नाम गरेका ब्राह्मणले प्रणाम गरेर नारदलाई सोधे – हैन हे मुनिवर ! यो के आश्चर्य भएको हो ? ॥९७–९९॥

नारदले भन्नुभयो – हे विरजा ! ब्रह्मतीर्थबाट पैदा भएको यस फलका सम्बन्धमा आश्चर्य मान्नुपर्ने कुनै कुरा छैन किनभने सबैले यसरी नै स्नान गरेर परमपदलाई प्राप्त गरेका छन् ॥१००॥

हे अगस्त्य मुनि ! धर्म, स्नान र व्रत नगर्ने तथा ज्ञान नभएको कुनै अधम राक्षस पनि अघि धर्मधाराको प्रभावबाट मुक्त भएको थियो ॥१०१॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा ब्रह्मतीर्थको माहात्म्यवर्णननामक छैसट्ठियौं अध्याय पूरा भयो।

---

५७. विप्रश्चित्रात्मा नम्य तत्सखा इति न.सं.पु.पाठः।

# सप्तषष्टितमोऽध्यायः

## लिङ्गतीर्थमाहात्म्यम्

विरज उवाच

नमस्ते भगवन् भूमन् नारद सर्वसाक्षिणे। एतच्छ्रोतुमनास्तेऽहं धर्मधाराप्रशंसनम् ॥१॥
विना स्नानं विना धर्मं ज्ञानं तीर्थं व्रतं तपः। नरत्वं चाऽपि ब्रह्मत्वं कथं लब्धं तु रक्षसा[1] ॥२॥

नारद उवाच

आसीत्कश्चित्पुरा विप्र ! ब्राह्मणः शान्तचेतनः। हरिदास इति ख्यातस्तपस्वी वेदविद् इतिः ॥३॥
अन्तर्वेदीं परित्यज्य चाऽत्रैव प्राप्तवान् द्विजः। श्रुत्वा काश्यां तपस्कुर्वन्[2] गण्डकीनां प्रसंशनम् ॥४॥
धर्मधारा नदी पुण्या शिप्रा वा च तथाऽपरा। लिङ्गतीर्थं तयोर्योगे भैरवाख्यं तथाऽपरम् ॥५॥
द्वियोजने ह्यतो दूरे चैशान्यां दिशि राजते। तस्मिन्तीर्थे द्विजः स्नात्वा तद्रोधसि च संयमी ॥६॥
पुष्पैः पत्रैः समानर्च भक्तितो गण्डकीशिलाम्। पूर्णिमायां समासाद्य पञ्चोपचारकैर्मुदा ॥७॥
ध्यानमग्ने[3] परं विप्रे भक्त्या वाक्कायमानसैः। तस्मिँस्तत्र समासृत्य राक्षसो भीषणाननः ॥८॥
जिघृक्षुरग्रजं दोर्भ्यां क्षुत्पिपासासमाकुलः। संक्षुब्धमानसो विप्रः प्रेक्ष्य रक्षो भयावहम् ॥९॥
यावदन्तिकमायान्तं निर्माल्यमग्रहीत् क्षणात्। स तं निर्माल्यभाण्डेन ताडयामास कौणपम्[4] ॥१०॥
मुखं व्यादाय चायान्तं मुखमुद्दिश्य सत्वरम्। गण्डकीजलसम्मिश्रनिर्माल्यस्पर्शनैर्ध्रुवम् ॥११॥
रक्षःकलेवरान्मुक्तो राजदेहं स लब्धवान्। असौ स्वविग्रहं प्रेक्ष्य हर्षितो दिव्यसुन्दरम् ॥१२॥
जातिस्मरणमापाशु प्रणम्य तमुवाच सः।

---

अध्याय – ६७

## लिङ्गतीर्थको माहात्म्य

विरजाले भने – हे महात्मा नारद ! सम्पूर्णका साक्षीस्वरूप भएका हजुरलाई नमस्कार छ। म हजुरबाट अब धर्मधाराको माहात्म्य सुन्न चाहन्छु। स्नान, धर्म, ज्ञान, तीर्थ, व्रत, तपस्या केही नगरीकन त्यो राक्षसले मानिसको शरीर कसरी प्राप्त गऱ्यो ? ॥१-२॥

नारदजीले भन्नुभयो – हे ब्राह्मण विरजा ! अघि वेद जान्ने, तपस्या गर्ने, जोगीको भेषधारी, शान्त चित्त भएका हरिदास नाम गरेका कुनै व्यक्ति थिए। काशीमा तपस्या गर्दा गण्डकीको प्रशंसा सुनेर अन्तर्वेदी नाम गरेको देशलाई छोडेर ती बाहुन यहाँ आएका थिए। धर्मधारा र शिप्रा नाम गरेका दुईवटा पुण्य नदीहरू छन्। ती दुई नदीको दोभानमा लिङ्गतीर्थ छ। त्यसको ईशानकोणमा दुई योजन पर भैरवतीर्थ छ। त्यसै तीर्थमा ती ब्राह्मणले स्नान गरेर जितेन्द्रिय भई पूर्णिमाको दिन गण्डकीको शिला अर्थात् शालग्रामको पत्र, पुष्प आदि पञ्चोपचारले भक्तिपूर्वक पूजा गरे ॥३-७॥

त्यस तीर्थमा वचन, शरीर र मन लगाएर भक्तिपूर्वक ब्राह्मण ध्यान गर्न लागेको बेला भोक र प्यासले आत्तिएको डरलाग्दो मुख भएको राक्षसले हात पसारेर ब्राह्मणलाई खान खोज्यो। त्यसपछि ब्राह्मण डरलाग्दो राक्षसलाई देखेर आत्तिए। जब त्यो राक्षस नजिकै आउन लागेको थियो ती ब्राह्मणले निर्माल्य राखेको भाँडो समातेर त्यस भाँडाले त्यस राक्षसलाई हिर्काए। मुख बायेर आउन लागेको राक्षसको मुखतिर फ्याँकिएको गण्डकीको पानी मिसिएको निर्माल्यले स्पर्श गरेको हुँदा त्यो राक्षस राक्षसको रूपबाट मुक्त भयो र त्यसले राजाको शरीर लियो। आफ्नो अत्यन्त सुन्दर शरीरलाई देखेर उसलाई आफ्नो पूर्वजन्मको जातिगत स्मरण भयो। त्यसपछि हत्त न पत्त ढोगेर त्यस राक्षसले ब्राह्मणलाई भन्न थाल्यो ॥८-१२½॥

---

१. नरदेहस्तथा ब्रह्मन् लब्धस्तद्रक्षसापरम् इति न.सं.पु.पाठः।
२. तपस्तप्तम् इति न.सं.पु.पाठः।
३. ध्यायमाने इति न.सं.पु.पाठः।
४. कौडपम् इति न.सं.पु.पाठः।

राजोवाच

नमस्तेऽस्तु विभो ब्रह्मन् तपःशीलगुणाश्रित ॥१३॥
लोकोद्धारणहेतुज्ञ नमामि चरणौ तव[५] । नमस्ते ब्रह्मरूपाय ब्रह्माङ्गाङ्गसमुद्भव ॥१४॥
लोकोपकारशीलाय द्विजेशाय नमो नमः । त्वत्प्रसादादहं मुक्तो रक्षोदेहेन साम्प्रतम् ॥१५॥
भवन्निर्मुक्तपापोऽहं व्रजे हरिहरालयम् ।

स्कन्द उवाच

तेन स्तुतो द्विजश्चैव शालग्रामप्रपूजकः ॥१६॥
चित्रात्माशु तमालोक्य प्रोवाच सहसा मुने ।

हरिदास उवाच

को भवान् क्वागतस्तात वदैता हि दशास्तव ॥१७॥
रक्षसा वपुषा युक्तः कथमद्य वनेचरः । ईदृशं रूपवान् भूत्वा नरोत्तमतनुर्भवान् ॥१८॥
आममांसाशनक्रव्याद्देहयुक्तः कथं पुनः ।

राजोवाच

वैदर्भाधिपतिस्तात चाभूत्पूर्वमिदं वपुः ॥१९॥
दानधर्मरतोऽप्यार्य्य प्रजापालनतत्परः । अन्यदत्तं पुरा क्षेत्रं पिशुनाच्छ्रुतिशर्मणः ॥२०॥
सीमाधिकमिति ज्ञात्वा संहृता[६] तद्रसा मया । रुदित्त्वा परिवारैः स शशाप सह मां भृशम् ॥२१॥
अवलुण्ठितवान् क्षेत्रं तस्माद्रक्षो भवेरिति । ततो देहान्तरे ब्रह्मन् ह्यवाप क्रमतः कृमिम् ॥२२॥
भुक्तवान्नरकं कुण्डं षष्टिवर्षसहस्रशः ।

---

राजाले भने – तपस्या, शील र गुणले युक्त भएका हजुरलाई नमस्कार छ। लोकको उद्धार गर्ने कारणका वेत्ता हजुरको चरणलाई म नमस्कार गर्छु। ब्रह्माको अङ्गबाट उत्पन्न भएका ब्रह्मस्वरूप हजुरलाई नमस्कार छ। सम्पूर्ण प्राणीको उपकार गर्न सिपालु द्विजश्रेष्ठलाई बारम्बार नमस्कार छ। हजुरको अनुग्रह अनुसार राक्षसको शरीरबाट म अहिले मुक्त भएँ। हजुरले गर्दा पापबाट मुक्त भएको म हरिहरको भवनमा जाँदैछु ॥१३-१५॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! शालग्रामको पूजा गर्ने ती ब्राह्मण राक्षसले आफ्नो स्तुति गरेको देखेर तीन छक परे र हत्त न पत्त उनी भन्न थाले ॥१६॥

हरिदासले भने – तपाईं को हुनुहुन्छ ? कहाँबाट आउनुभएको हो ? तपाईंको यो दशा कसरी भयो ? राक्षसको शरीर धारण गरेर तपाईं किन वनमा डुल्नुहुन्छ ? फेरि काँचो मासु खाने राक्षसको शरीर भएर पनि तपाईंले यस्तो रूपले युक्त भएको मानिसको शरीर कसरी पाउनुभयो ? ॥१७-१८॥

राजाले भने – हे तात ! म अघि विदर्भ देशको राजा थिएँ, प्रजालाई राम्रोसित पालेर दान, धर्म गरेको थिएँ, यो मेरो त्यही नै अघिको शरीर हो। हे आर्य ! अघि अर्कैलाई दान दिएको खेत श्रुति शर्माको छुल्याईंले सीमाभन्दा बढी लिएछ भन्ने ठानेर मैले त्यो जमिन अपहरण गरेँ। रोएर परिवारसहित ती ब्राह्मणले मलाई सराप दिए– तिमीले दान दिएको खेत लुट्यौ, त्यसैले राक्षस बन। हे ब्राह्मण ! त्यसपछि अर्को जुनीमा कीरो भएर साठी हजार वर्षसम्म नरककुण्डको भोग गरेँ ॥१९-२२½॥

---

५. नमेऽहञ्चरणौ तव इति न.सं.पु.पाठः ।  ६. अहारि इति न.सं.पु.पाठः ।

तद्देहान्ते क्रमाद् ब्रह्मन् रक्षोदेहं समाप्तवान् ॥२३॥
क्षुत्पिपासाक्रुधाविष्टो बभ्रामाऽहं वनाद् वनम्[७]। इदानीं त्वत्कृतात् तात वपुरिदं प्रलब्धवान् ॥२४॥
रक्षःकलेवरं त्यक्त्वा[८] दैवादिहाऽव्रजं वनात्। मुमुक्षुः[९] साम्प्रतं ब्रह्मन् भवत्कृतोपदेशतः ॥२५॥
नोत्सहेऽहं[१०] क्षणं स्थातुमस्थिरे विषमे भवे।

ब्राह्मण उवाच

अहो भाग्यवतां श्रेष्ठः पुरुषोऽयं वनेचरः ॥२६॥
रक्षःकलेवरं त्यक्त्वा[११] राजदेहं समाप्तवान्। मोक्तुमियेष सोऽप्याशु शापैर्मुक्तः पुराकृतैः ॥२७॥
धन्यं त्रिशूलगङ्गाया जलं पापविधूननम्। धन्यञ्च विष्णुनिर्माल्यं सर्वदुष्कृतनाशनम् ॥२८॥
अस्मिंस्तीर्थे च लिङ्गाख्ये सर्वदुष्कृतनाशने। भक्तितः स्नाहि राजेन्द्र मनोवाञ्छाप्रपूर्तये[१२] ॥२९॥

नारद उवाच

आकर्ण्य वचनं तस्य स प्रणम्य द्विजोत्तमम् ॥३०॥
भक्तिभिस्तिसृभिः सस्नौ लिङ्गतीर्थे तु वैरजम्। उपदेशं समादाय ब्राह्मणान्नृपतिस्ततः ॥३१॥
तत्तटे कृतवान्[१३] भक्त्या प्राणायामत्रयं त्रयम्। पूर्णिमायां तपोमासि नृपस्तत्याज विग्रहम् ॥३२॥

---

हे ब्राह्मण ! त्यसपछि त्यो शरीर छोडेर मैले राक्षसको जुनी पाएँ। भोक, प्यास र रीसले युक्त भएर म वनमा खूब घुमिरहेको छु। अहिले हजुरले गर्दा वनबाट आउँदा आउँदै अचानक राक्षसको शरीरलाई त्यागेर मैले यो शरीर प्राप्त गरेँ। हे ब्रह्मन् ! हजुरले दिनुभएको उपदेश सुनेर अब म मुक्त हुन चाहन्छु। अस्थिर यस विषम संसारमा एकछिन पनि बस्ने मन छैन ॥२३–२५॥

ब्राह्मणले भने – यी वनेचर त अत्यन्त भाग्यमानी पुरुष रहेछन्, किनभने यिनले राक्षसको शरीरलाई छोडेर राजाको शरीर पाए ॥२६॥ पापलाई पखाल्न सक्ने यो त्रिशूली गङ्गाको जल धन्य रहेछ, किनभने त्यसैको स्पर्शले गर्दा यी राजा पहिले गरेका सम्पूर्ण पापबाट छुटकारा पाएर मुक्त हुने इच्छा गर्दैछन् ॥२७॥ सम्पूर्ण पापलाई नाश गर्ने विष्णुको निर्माल्य पनि धन्य रहेछ। हे राजेन्द्र ! सम्पूर्ण कुकृत्यलाई नाश गर्ने यसै तीर्थमा मनले चिताएको कामना पूर्ण होस् भन्ने कामना गर्दै भक्तिपूर्वक नमस्कार गर ॥२६–२९॥

नारदजीले भन्नुभयो – ती ब्राह्मणको वचन सुनेर उनले ब्राह्मणश्रेष्ठ वैरजलाई नमस्कार गरे। त्यस लिङ्गतीर्थमा तीन किसिमको भक्तिले युक्त भएर उनले स्नान पनि गरे। त्यसपछि राजाले ब्राह्मणको उपदेश अनुसार भक्तिपूर्वक त्यस तटमा तीन–तीनपटक प्राणायाम गरे ॥३०॥ माघ महिनाको पूर्णिमाको राति राजाले शरीर छोडे ॥३०–३२॥

---

७. क्षुत्पिपासारुषैर्विष्टो बाभ्रम्यते वनाद्वनम् इति न.सं.पु.पाठः।
८. त्यक्तो इति न.सं.पु.पाठः।
९. मुमुक्षो इति न.सं.पु.पाठः।
१०. नोत्सहेयम् इति न.सं.पु.पाठः।
११. रक्षः कलेवरात्त्यक्तो इति न.सं.पु.पाठः।
१२. मनोवाञ्छार्थभावयन् इति न.सं.पु.पाठः।
१३. तद्रोधसि कृत इति न.सं.पु.पाठः।

सायं समागते याने तत्र वैष्णवशाङ्करे[१४] । विवादश्चाभवत्तत्र गणयोरुभयोर्मिथः[१५] ॥३३॥
वैष्णवं शाङ्करं नेतुं नृपन्तं च परस्परम्[१६] । जलैस्त्रिशूलगङ्गायाः स्पृष्टः शैवपदं लभेत् ॥३४॥
शालग्रामस्य निर्माल्यैः स्पृष्टो योग्यो हरेः पदे । एवं व्यवस्थिते वादे तेषां मिथो विचारिते ॥३५॥
उत्पन्नं तैजसं लिङ्गं नद्योः सुसङ्गमे तयोः । तेजोलिङ्गं तु जग्राह तच्छरीराद् हि तन्महः[१७] ॥३६॥
समक्षे सर्वलोकानां दीपशिखायामिव सा शिखा । तस्मिंल्लीने निराशास्ते यानैः स्वं स्वं ययुः पुरम् ॥३७॥
अवदन् खलु तद्वार्त्तां हरिशङ्करयोः पुरः । विमुक्ते नृपतौ विप्रे विचित्रां वीक्ष्य तद्गतिम्[१८] ॥३८॥
शालग्रामं च सर्वस्वं विप्रेभ्यः प्रददौ क्षणात् । प्रत्याहारव्रतैर्युक्तः तपःकृष्णाष्टमीतिथौ ॥३९॥
लब्धवान् तद्गतिं[१९] विप्रो मुनिवृन्दावृतो द्विजः ।
माहात्म्यमेतत्कथितं मया ते तल्लिङ्गतीर्थाभिधमुक्तिभूमेः[२०] ।
त्वं धर्मतीर्थस्य तथैव यात्रां[२१] यद्यस्ति श्रद्धा हृदये विधेहि[२२] ॥४०॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे लिङ्गतीर्थमाहात्म्यं नाम सप्तषष्टितमोऽध्यायः ॥६७॥

---

त्यहाँ विष्णु र शिवजीका गणहरू सायङ्कालमा विमान लिएर उनलाई लिन आइपुगे। राजा विमानमा बसेपछि राजालाई वैष्णवपदमा लैजाने वा शैवपदमा लैजाने भन्ने विषयमा शिव र विष्णुका गणहरूका बीच विवाद भयो– त्रिशूलगङ्गाको पानीले छोएको हुँदा उनले शैव पद पाउनुपर्थ्यो, शालग्रामको निर्माल्यले छोएको हुँदा उनले वैष्णव पद पाउनुपर्थ्यो ॥३३–३४½॥

यस्तो तिनीहरूको विवाद भइरहेको अवस्थामा ती दुई नदीको सङ्गममा एउटा तेजस्वी लिङ्ग आविर्भाव भयो। त्यो विवाद सुनिरहेका सबैका अगाडि राजाका शरीरबाट निक्लिएको तेज एउटा बत्तीमा अर्को बत्ती मिलेझैँ गरी तैजस लिङ्गमा विलीन भयो। त्यो तेज लीन भएपछि निराश भएर ती गणहरू यानमा चढेर आ–आफ्नो लोकतिर लागे ॥३५–३६॥

ती राजा मुक्त भएको वृत्तान्त तिनीहरूले क्रमशः विष्णु र शिवलाई बताए। विरज राजा मुक्त भएपछि त्यो विचित्र घटना देखेर ती ब्राह्मणले शालग्राम र आफ्नो सर्वस्वसमेत तुरुन्त ब्राह्मणलाई दान गरे। हे अगस्त्य मुनि ! प्रत्याहार अर्थात् इन्द्रियहरूलाई विषयबाट रोक्ने यौगिकक्रिया, व्रत र तपस्यामा संलग्न भएका ती ब्राह्मणले माघकृष्ण अष्टमीका दिन मुनिहरूको अगाडि नै त्यही गति प्राप्त गरे ॥३७–३९½॥

मुक्तिप्रद यस लिङ्गतीर्थको महिमा मैले तपाईंलाई बताएँ। त्यस्तै धर्मतीर्थको माहात्म्य पनि सुनाएँ। यदि तपाईंलाई पनि त्यसमा श्रद्धा छ भने त्यसै धर्मतीर्थको यात्रामा जानुहोस् ॥३९–४०॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा लिङ्गतीर्थको माहात्म्यवर्णननामक सत्सट्ठियौं अध्याय पूरा भयो।

---

१४. सायं समागतौ यानौ तत्र वैष्णवशांकरौ इति न.सं.पु.पाठः।
१५. गणयोर्यानमाश्रिते इति न.सं.पु.पाठः।
१६. नृपे मिथो विगर्हयन् इति न.सं.पु.पाठः।
१७. तेजोलिङ्गोऽग्रहीत्तस्मिन् तच्छीराद्धि तेजसम् इति न.सं.पु.पाठः।
१८. विप्र विचित्राविक्ष्य तद् वृतिम् इति न.सं.पु.पाठः।
१९. अलभत्तद्गतिम् इति न.सं.पु.पाठः।
२०. विमुक्तभूमे इति न.सं.पु.पाठः।
२१. विप्र इति न.सं.पु.पाठः।
२२. श्रद्धास्ति ते यद्यपि कर्त्तुमाशु इति न.सं.पु.पाठः।

# अष्टषष्टितमोऽध्यायः

## धर्मतीर्थमाहात्म्यम्

विरज उवाच

भगवन् मुनिशार्दूल पितामहौरसोद्भव। नतिरस्तु प्रणामोऽस्तु[1] तुभ्यं ज्ञानप्रदायिने ॥१॥
धर्मतीर्थमिति प्रोक्तं[2] भवता हि दयानिधे। कस्मिन् स्थाने हि मुक्तः कः तत् तीर्थं कीदृशं वद[3] ॥२॥

स्कन्द उवाच

इत्याकर्ण्य वचोऽगस्त्य विरजोक्तं स नारदः। व्याचष्ट हर्षतस्तस्मै स्वभक्ताय द्विजन्मने ॥३॥

नारद उवाच।

विश्वधारोद्भवो यत्र महाकूटाद्रिशेखरात्। गव्यूत्येकप्रतीच्यां हि बभूव स्वर्णशेखरः[4] ॥४॥
तत्रासीद् भगवान्धर्मः साक्षाल्लोकविमुक्तये। तत्प्रतीच्यामधर्म्मोऽपि वैदूर्यशेखरे परे ॥५॥
अभूत्पूर्वं विवादश्च तयोरन्तरमग्रज[5]। अहं पौरुषवान् कर्ता हर्ताऽहं नापरो भुवि[6] ॥६॥
एवं तयोर्विवादे न परिच्छिन्ने कथञ्चन। ब्रह्मा लोकात्समागत्य ददर्श तौ समुद्धतौ ॥७॥
साक्षान्नैवमिमौ स्थाप्यौ त्रिगुणैश्च परिप्लुतौ। इति कृत्वा शशापाजस्तौ विरज विधिः स्वयम्[7] ॥८॥
भवतं द्वौ द्रवीभूतावनेकगुणसंयुतौ[8]। भविष्यतः स्त्रीरूपाया[9] नद्या विनिःसृतौ भुवि ॥९॥
आकर्ण्य ब्रह्मणः शापं धर्मो दुःखातुरोऽपरः। शापान्तं प्रष्टुकामौ तौ व्याचक्षाते स्वहेतुकम् ॥१०॥

---

## अध्याय - ६८
## धर्मतीर्थको माहात्म्य

विरजले भने – ब्रह्माजीबाट जन्मनुभएका मुनिश्रेष्ठ हे नारदजी ! ज्ञान दिने हजुरलाई नमस्कार छ, नमस्कार छ। हे दयानिधे ! हजुरले धर्मतीर्थ भनेर भन्नुभयो, त्यो तीर्थ कुन ठाउँमा छ ? त्यहाँबाट को मुक्त भयो ? त्यो कस्तो छ ? हे प्रभु ! मलाई बताउनुहोस् ॥१–२॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! विरजले भनेको त्यो कुरा सुनेर प्रसन्न हुँदै आफ्ना भक्त ब्राह्मणलाई नारद भन्न लाग्नुभयो ॥३॥

नारदले भन्नुभयो – महाद्रिकूट नाम गरेको पर्वतको शिखरबाट जहाँ विश्वधाराको उत्पत्ति भएको छ, त्यसको दुई कोस पश्चिमपट्टि सुवर्णशेखर नाम गरेको पर्वत छ। त्यहाँ संसारको मुक्तिका निमित्त भगवान् धर्म प्रत्यक्ष रूपमा बस्नुभएको छ। त्यसको पश्चिमपट्टि अर्को वैदूर्य नाम गरेको शिखरमा अधर्म पनि बसेका छन्। हे विरज ! त्यहाँ ती दुई धर्म र अधर्मका बीचमा जगत्का कर्ता, धर्ता र हर्ता संसारमा अरू कोही छैन भन्ने विषयमा विवाद भएको थियो। ती दुईको विवाद कहिल्यै टुङ्गिएन। त्यो कुरा थाहा पाएर ब्रह्माजी आफ्नो लोकबाट आउनुभयो र आउँदा ती दुबैलाई अभिमानले उद्धत भएको देख्नुभयो ॥४–७॥

हे विरज ! सत्वगुण, रजोगुण र तमोगुणले युक्त भएका यी दुईलाई प्रत्यक्ष हुने गरी यसरी राख्नु ठीक हुँदैन भन्ने ठानेर ब्रह्माले दुबैलाई सराप दिनुभयो। तिमी दुबैले पग्लिएर विभिन्न गुणले युक्त हुँदै स्त्रीजातिका रूपमा रहेकी नदीबाट निस्केर पृथिवीमा प्रवाहित हुनेछौ। ब्रह्माजीको सराप सुनेर अत्यन्त दुःखित भएका धर्म र अधर्मले सरापको अन्त्य कसरी हुन्छ भन्ने विषयमा सोध्नका लागि सरापको कारण सोधे ॥६–१०॥

---

१. नमस्तेऽस्तु इति न.सं.पु.पाठः।
२. धर्मतीर्थ इति प्रोक्त इति न.सं.पु.पाठः।
३. कीदृशो वद मे प्रभो इति न.सं.पु.पाठः।
४. आसीत्सुवर्णशेखर इति न.सं.पु.पाठः।
५. विवदञ्च तयोरभ्यन्तमग्रज इति न.सं.पु.पाठः।
६. कर्त्तेति पौरुषश्चेति हर्त्ता जगति नापर इति न.सं.पु.पाठः।
७. विरजासावजस्तयोः, इति न.सं.पु.पाठः।
८. भवता द्वौ द्रवीरूपा यतौ गुणैः परिप्लुतौ इति न.सं.पु.पाठः।
९. स्त्रियो रूपौ, इति न.सं.पु.पाठः।

धर्माधर्मावूचतुः

कदा मोक्ष्यावहे तात भवच्छापातिगौरवात्। लप्स्यावहे कदा देहं युक्तं धर्मतपोव्रतैः[१०] ॥११॥

ब्रह्मोवाच

धर्म्मश्च नैवञ्च रुषा प्रविष्टो भद्रात्मकः सत्यपरः सदाऽभूत्।
सत्यं छिनत्त्याशु भृशं त्वधर्मो त्वं धर्म शप्तोऽपि हि धर्महितोः[११] ॥१२॥
हे धर्म ! नैव दुःखी स्याः[१२] स देहो नैव चिह्नितः। अधर्मोऽपि तवैवाऽऽशु लोकानामुपकारिणः[१३] ॥१३॥
त्वयि स्नानं प्रकुर्वन्ति सर्वे लोका नराः परे[१४]। तेभ्यो ददासि धर्म त्वं चतुर्वर्गफलेप्सितम् ॥१४॥
अतो ह्यधो महातीर्थं सुधारससमागमे। धर्मतीर्थमिति ख्यातं सर्वदुष्कृतनाशनम् ॥१५॥
अत्रैवार्या गमिष्यन्ति सर्वे लोकाः सुरासुराः। त्वयि स्नानं प्रकुर्वन्ति धर्म पश्यसि साम्प्रतम् ॥१६॥
त्वयि स्नाने कृते सर्वे[१५] प्राप्स्यन्ति त्रिदिवं परम्।

नारद उवाच

तस्मिन्नवसरे तत्र स्नातुं सर्वे समाययुः ॥१७॥
शक्रादयः सुरा दैत्याः सिद्धगन्धर्वकिन्नराः। रक्षोयक्षपिशाचाश्च पूषणाश्चाण्डजोद्भिजाः ॥१८॥
सप्तर्षयो वयं विप्राः ऋषयश्च तपोधनाः। मकरस्थे रवौ शुक्ले सप्तम्यां स्नातुमाययुः ॥१९॥
त्रिस्पृशायां विशेषेण धर्मार्थकामलब्धये[१६]। तिङ्सुबन्तयुतैर्वाक्यैः कुशोदक[१७] परित्यजन् ॥२०॥
कृत्वा मनोरथं चित्ते[१८] ध्यात्वा गङ्गां सुरासुराः। धर्मतीर्थे मुदा सस्नुर्गन्धर्वा ऋषयोऽप्सराः ॥२१॥

---

धर्म तथा अधर्मले भने – हे तात ! अत्यन्त गुरुतर हजुरको सरापबाट हामी कहिले मुक्त हुन्छौं ? धर्म, तपस्या र व्रतले युक्त भएको शरीर हामीले पाऊ ॥११॥

ब्रह्माजीले भन्नुभयो – धर्ममा यस्तो रीस भन्ने कुराको प्रवेश हुँदै हुँदैन। धर्म त कल्याणकारी र सत्यसँग सधैं सम्बद्ध हुन्छ। अधर्मले सत्यलाई नाश गरिदिन्छ। हे धर्म ! धर्मको रक्षाका लागि नै मैले तिमीलाई मैले सराप दिएको हुँ। हे आर्य धर्म ! तिमी दुःख नमान। शरीरधारीले तिमीलाई चिन्दैन। अधर्म पनि तिमीजस्तै हो अर्थात् उसलाई पनि तुरुन्त कसैले चिन्दैन। यो सबै लोककै कल्याणका निमित्त भएको हो। तिम्रै नाममा धर्मका लागि सम्पूर्ण लोक, मानिस तथा अन्य प्राणीले स्नान गर्छन्। हे धर्म ! तिमीले तिनीहरूलाई इच्छाअनुसार धर्म, अर्थ, काम, मोक्षसँग सम्बद्ध चार पुरुषार्थको फल दिन्छौ। यहाँदेखि तल सुधारसको समागममा सबै पापलाई नाश गर्ने धर्मतीर्थ नामले प्रसिद्ध महातीर्थ छ। त्यसै स्थानमा आर्य, देवता र राक्षसहरू आउनेछन् र तिम्रो जलमा स्नान गर्नेछन्। तिम्रो नै कारणले गर्दा सबै प्राणीहरू उत्तम स्वर्गमा प्राप्त हुनेछन्। हे धर्म ! तिमीले यो कुरा अहिले नै देख्नेछौ ॥१२–१६॥

नारदजीले भन्नुभयो – त्यसै अवसरमा स्नान गर्नका लागि सबै इन्द्र आदि गरिएको देवता, दैत्य, सिद्ध, गन्धर्व र किन्नरहरू त्यस ठाउँमा आए। राक्षस, यक्ष, पिशाच, पूषा, चराचुरुङ्गी, झारपात, सप्तर्षिहरू, तपस्वी अरू ऋषिहरू र हामीहरू पनि त्यहाँ आयौं। सूर्य मकरराशिमा सरेपछि शुक्ल सप्तमीका दिन त्रिस्पृशा नाम गरेको नदीमा आफ्नो मनोरथ सिद्धिका लागि स्नान गर्न सबै त्यहाँ आए। उनीहरूले धर्म, अर्थ र कामनामक पुरुषर्थलाई स्पर्श गर्न धर्मनदीमा तिङन्त र सुबन्त पदले युक्त भएका वाक्यहरू पढेर कुशोदकले तर्पण गरे। जे–जस्तो इच्छा लागेको थियो, हृदयमा लिएर देवता, राक्षस, गन्धर्व, ऋषि, अप्सराहरूले धर्मतीर्थमा स्नान गरे ॥१७–२१॥

---

१०. धर्म ध्रुवं त्वां किल शापितौ वै इति न.सं.पु.पाठः।
११ एतत्कलेवरं लिप्सोर्लब्धं धर्मतपोव्रतैः, इति न.सं.पु.पाठः।
१२. मा दुःखयार्यं धर्मं त्वम् इति न.सं.पु.पाठः ।
१३. लोकानामुपकारिणे इति न.सं.पु.पाठः ।
१४. नराऽपरा इति न.सं.पु.पाठः।
१५. त्वत्कृते सर्वलोकाश्च इति न.सं.पु.पाठः।
१६. यथाकामं प्रलब्धये इति न.सं.पु.पाठः।
१७. कुशोदकान् इति न.सं.पु.पाठः।
१८. यद्यत्कामं हृदाधाय इति न.सं.पु.पाठः

भावनिर्मलचित्तास्ते आचान्ता[१९] विधिवत्पुनः। केचिज्जेपुर्ततपुश्च ददुर्दायान्यथोचितम् ॥२२॥
गोभूहिरण्यवासांसि ब्राह्मणेभ्योऽशनानि च। सायङ्काले ददुर्दायान् तीर्थं सम्पूज्य वैधतः[२०] ॥२३॥
माघशुक्लस्य सप्तम्यां धर्मो नः प्रीयतामिति। हव्यकव्यार्च्चनं कृत्वा सम्भोज्य विधिवद् द्विजान्[२१] ॥२४॥
उषित्वा रजनीस्तिस्रः स्वं स्वं पदं ययुर्हि ते।

विरज उवाच

तीर्थेऽस्मिन् तात को मुक्तः प्रभावो वद कीदृशः। तत्सर्वं श्रोतुकामोऽस्मि[२२] सर्ववार्ताविशारद ॥२५॥

नारद उवाच

द्वापरान्ते कलौ प्राप्ते कश्चिन्मुक्तः शृणु द्विज। अन्तर्वेद्यां पुरा दिव्य आसीद् भद्रस्वरो द्विजः ॥२६॥
सर्वशास्त्रविशालोऽसौ वेदवेदाङ्गतत्त्ववित्। शिवभक्तियुतो नित्यं शिवपूजनतत्परः ॥२७॥
एकदा दिवसे विप्र ! गङ्गां स्नातुं ययौ द्विजः। सर्वोपचारमादाय मकरस्थे दिवाकरे ॥२८॥
स्नात्वाऽनेन च [२३]सद्भक्त्या लिङ्गं मृण्मयमर्चितम्। विसृज्य पार्थिवं लिङ्गं गङ्गायां वाहितुं[२४] ययौ ॥२९॥
स कराभ्यां तमादायानाभिजलं समाविशत्। जग्राह चरणौ तस्य ध्रुवं नक्रो जलान्तरे ॥३०॥
करस्थे शिवलिङ्गे च[२५] यावद्विसर्जने कृते। आदाय ब्राह्मणं नक्रः स्वाधिष्ठानं प्रणीतवान्[२६] ॥३१॥
पश्यँस्तं वारुणो नक्रं मामेति च न्यषेधयत्। वरुणकिङ्करो विप्रं नीतवान् वरुणालयम् ॥३२॥
तं प्रेक्ष्य वरुणोऽत्यन्तं हर्षितो साधु साध्विति। सजीवं ब्राह्मणं प्रेक्ष्य विद्याभूषणभूषितम् ॥३३॥
प्रश्नञ्चकार धर्मात्मा को भवान् क्वागतस्त्विह।

---

असल भावनाले गर्दा निर्मल चित्त भएका तिनीहरूले विधिपूर्वक आचमन गरे। तीमध्ये कसैले जप गरे, कसैले तपस्या गरे, कसैले गाई, वस्त्र र खाद्यान्न ब्राह्मणहरूलाई यथोचित रूपमा दान गरे। माघ शुक्ल सप्तमीको सायङ्कालमा विधिपूर्वक तीर्थको पूजा गरेर हामीमाथि धर्म प्रसन्न रहून् भन्दै उनीहरूले दान दिए। हव्यले देवताको र कव्यले पितृहरूको पूजा गरी इच्छानुसार ब्राह्मणहरूलाई भोजन गराई तीन रातसम्म त्यहाँ बसेर उनीहरू सबै आ-आफ्ना स्थानमा गए ॥२२-२४॥

विरजले भने – हे तात ! हजुर सबै कुरा जान्नुहुन्छ, यस तीर्थमा स्नान गरेर को मुक्त भयो ? यसको प्रभाव कस्तो छ ? त्यो सबै सुन्न चाहन्छु, मलाई बताउनुहोस् ॥२५॥

नारदले भन्नुभयो – हे विरज ! द्वापर युगको अन्त्यमा कलियुग लागेपछि कुनै एउटा ब्राह्मण मुक्त भएका छन्, सुन्नुहोस्। अघि अन्तर्वेदी नाम गरेको देशमा सबै शास्त्रका ज्ञाता, वेद र वेदाङ्गका तत्व जान्ने शिवभक्त तथा सधैँ शिवजीको पूजा गर्ने कुनै भद्रस्वर नाम गरेका ब्राह्मण थिए ॥२६-२७॥

हे विरज ! एक दिन सूर्य मकरराशिमा सरेपछि सम्पूर्ण सामग्री लिएर स्नान गर्नका लागि ती ब्राह्मण गङ्गामा गए। यिनले विधिपूर्वक स्नान गरेर भक्तिपूर्वक माटोले बनाएको लिङ्गको पूजा गरे। त्यसपछि विसर्जन गर्ने क्रममा त्यो पार्थिव लिङ्गलाई गङ्गामा सेलाउन लगे। उनले त्यस लिङ्गलाई हातमा लिएर पानी नाभिस्थलमा आउञ्जेलसम्म गङ्गाभित्र प्रवेश गरे। पानीभित्र रहेको गोहीले उनको दुईवटा पाउ समात्यो। हातको शिवलिङ्ग विसर्जन गर्दा-नगर्दा ब्राह्मणलाई लिएर गोही आफ्नो वासस्थानमा जान लाग्यो। त्यो देखेर वरुणका सेवकले ग्राहलाई नगर नगर भनेर रोक्यो। ती ब्राह्मणलाई वरुणका सेवकले वरुणको घरमा पुऱ्यायो ॥२८-३२॥

उनलाई देखेर वरुण अत्यन्त हर्षित भए र साधु साधु भने। जीवैसित आएका विद्यारूपी अलङ्कारले विभूषित भएका ती ब्राह्मणलाई देखेर धर्मात्मा वरुणले सोधे – तपाईं को हुनुहुन्छ ? कहाँबाट यहाँ आइपुग्नुभयो ? तपाईंलाई स्वागत छ ॥३३॥

---

१९. आचम्य इति न.सं.पु.पाठः।
२०. पूज्य यथाविधि इति न.सं.पु.पाठः।
२१. विप्रान्भोज्य यथेसिप्तान् इति न.सं.पु.पाठः।
२२. तत् सर्वं श्रोतुकामाय इति न.सं.पु.पाठः।
२३. स्नात्वाऽसौ विविधद् इति न.सं.पु.पाठः।
२४. गङ्गां प्रवाहितुम् इति न.सं.पु.पाठः।
२५. शिवलिङ्गञ्च इति न.सं.पु.पाठः।
२६. स्वाभ्यन्तरं प्रणीतवान्, इति न.सं.पु.पाठः।

ब्राह्मण उवाच

भारद्वाजान्वयोद्भूतो निगमागमदीक्षितः ॥३४॥

गुरूपदेशमादाय शिवार्चनोत्सुकोऽनिशम्। शिवार्च्चनावसाने च[२७] रवेः सङ्क्रमणे विभो ॥३५॥

नक्रो जग्राह मत्पादौ गङ्गाभ्यन्तरमाश्रिते। निषेध्य तमहं तात भवतः किङ्करेण वै ॥३६॥

अत्रैव च समानीतः कृपाशीलेन जीवितः[२८]। नमस्तेऽस्तु च मे भूमन्सर्वशास्त्रविदांवर ॥३७॥

नमस्ते सर्वलोकानां हिताय सात्वतां वर। नमस्तेऽस्तु महाभाग लोकपालाय ते नमः ॥३८॥

ब्रह्माङ्गजाय देवाय यादसां पतये नमः।

नारद उवाच

स्तुत्वैवं वरुणं विप्रो मनुभिः[२९] किल वारुणैः ॥३९॥

भक्तिविनीतसद्वाच्यैः[३०] सन्तुष्टो वरुणो द्विजे। सम्प्रेक्ष्य ब्राह्मणं सौम्यं ज्ञानेनातिगुणैर्युतम् ॥४०॥

उवाच वचनं तस्मै वरदानाय साम्प्रतम्।

वरुण उवाच

अत्र मा भीयतां विप्र सन्त्रासस्त्यज्यतां त्वया[३१] ॥४१॥

सुखी भव प्रसादान्मे भक्त्या[३२] शिवार्चने रतः। गृहाण परिधानं त्वं दिव्याभरणभूषणम् ॥४२॥

शिवार्चनपरं दृष्ट्वा बिभ्यति सुरनायकाः[३३]।

---

ब्राह्मणले भने – भारद्वाज गोत्रको वेदशास्त्र पढेको म ब्राह्मण हुँ। गुरुबाट शिक्षादीक्षा लिएर सधैं शिवजीको पूजा गर्छु ॥३४॥ सूर्य मकरराशिमा पुगेको बेला शिवजीको पूजा सकिएपछि गङ्गाभित्र पसेको अवस्थामा गोहीले मेरा दुईवटा पाउ समात्यो ॥३५॥ हे तात ! तपाईंका सेवकले त्यसलाई ममाथि कृपा गरी प्राणैसित यहाँ ल्याइदिए। सम्पूर्ण शास्त्रका ज्ञाता हजुरलाई मेरो नमस्कार छ। सम्पूर्ण प्राणीका हितकर्ता सर्वश्रेष्ठ हजुरलाई मेरो नमस्कार छ ॥३६-३७॥ हे महाभाग ! हजुरलाई नमस्कार छ। लोकपालका रूपमा रहनुभएका हजुरलाई नमस्कार छ। ब्रह्माको शरीरबाट उत्पन्न जलजन्तुका स्वामी हजुर वरुण देवतालाई नमस्कार छ ॥३८॥

नारदले भन्नुभयो – हे विरज ! यसरी वरुण मन्त्रद्वारा भक्तिपूर्वक झुकेर ब्राह्मणले गरेको उत्तम स्तुतिबाट प्रसन्न भए। ज्ञान र गुणले युक्त भएका सौम्य स्वरूपका ती ब्राह्मणलाई देखेर वर दिनका लागि उनले भने ॥३९-४०॥

वरुणले भने – हे ब्राह्मण ! यहाँ डराउनुपर्दैन, तिमी डराउन छोड। मेरो अनुग्रहबाट तिमी सुखी बन, भक्तिपूर्वक शिवजीको पूजामा लाग। तिमी दिव्य गहना लैजाऊ। हे सौम्य ! शिवजीको पूजा गर। शिवजीको पूजा गर्ने व्यक्तिदेखि देवताका नायकहरू पनि डराउँछन् ॥४१-४२॥

---

२७. शिवार्चनावसानेऽहम् इति न.सं.पु.पाठः।
२८. अत्रैव नीतवाँश्चाहं कृपाशीलेन जीवयन् इति न.सं.पु.पाठः।
२९. ऋचाभि इति न.सं.पु.पाठः।
३०. भक्तिभावामरैर्वाच्यैः, इति न.सं.पु.पाठः।
३१. त्यज्यतां भीषणं त्वया इति न.सं.पु.पाठः।
३२. भक्ति इति न.सं.पु.पाठः।
३३. अर्चताच्च शिवं सौम्य त्रस्यन्ति सुरनायकम् इति न.सं.पु.पाठः।

नारद उवाच

ततो जनमुखाच्छ्रुत्वा सुभद्रा नाम तत्प्रिया ॥४३॥

मृतस्तवेति भर्ताऽसौ साध्वी रुरोद वै भृशम्। हाभर्तर्हा प्रिय स्वामिन् चित्तं संहृत्य[३४] वै गतः ॥४४॥

विलप्यैवं बहु साध्वी तत्तीरं त्वरितागमत्। विषण्णवदना क्रोशाद् गङ्गातीरे ललाप सा ॥४५॥

विलपन्तीं यतिर्दृष्ट्वा[३५] कश्चित्पप्रच्छ हेतुकम्।

सुभद्रोवाच

स्वामिना[३६] रहिता चाहं जीवितुं नोत्सहे विभो ॥४६॥

प्रियेण रहिताया मे वृथा जन्म वृथा क्रिया। आगमिष्यति जीवन् सन् मम प्रियः कथं वद ॥४७॥

येनासवो हि धार्यन्ते[३७] चोपायस्तूपदिश्यताम्।

यतिरुवाच

गृहाण वेत्रकं सौम्ये प्ररोक्ष्यति हि जीवितुम्[३८] ॥४८॥

यस्मिन्तीर्थे क्षणं तर्ह्याजीव्यागच्छति ते पतिः[३९]। स्नात्वा स्नात्वा च तीर्थेषु क्षणमारोप्य वेत्रकम् ॥४९॥

प्राच्यवाचीप्रतीचीषु चोदीच्यां तत्परीक्षयेः[४०] ।

नारद उवाच

कुतूहलेन संभाष्य चाश्वास्याबोध्य तां यतिः ॥५०॥

स्वाश्रमं प्रययौ स्नात्वा परित्यज्याशु वेत्रकम्। संगृह्य वेत्रकं सापि प्राचीं स्नातुं ययौ दिशम् ॥५१॥

कृत्वा तथ्यं तदुक्तं तत् सखीभिर्यतिरूपिणा। गङ्गायोगेषु सा स्नात्वा कौशिकीनाञ्च सङ्गमे ॥५२॥

ब्रह्मपुत्रे परातीर्थे सस्नौ वेत्रं प्ररोप्य च। भगतीर्थे भगाख्यां सा स्नात्वा च प्रार्थयत्पतिम् ॥५३॥

---

नारदले भन्नुभयो– त्यसपछि मानिसको मुखबाट तिम्रा पति मरे भन्ने सुनेर पतिव्रता सुभद्रा ज्यादै रोइन्। हे पति ! हे प्रिय ! हे स्वामी ! मेरो हृदयलाई छोडेर जानुभयो। यसरी धेरै विलाप गरेर पतिव्रता ती ब्राह्मणी हड्बडाउँदै त्यो तीरमा गइन्। कराउँदा–कराउँदा निन्याउरो मुख लगाएकी ब्राह्मणीले गङ्गाको तीरमा पनि विलाप गरिन्। हे ब्राह्मण ! नानाथरीको विलाप गरिरहेकी ती ब्राह्मणीलाई देखेर कुनै संन्यासीले त्यसरी विलाप गर्नुको कारण सोधे ॥४३–४५॥

सुभद्राले भनिन् – हे प्रभु ! पतिरहित भएर म बाँच्न चाहन्नँ। पतिविना मेरो जन्म र क्रियाकलापहरू व्यर्थ नै हुन्छन्। हे तात ! मेरा पति बाँचेर कसरी आउनुहुन्छ ? भन्नुहोस्। जे गर्दा म बाँच्न सक्छु, त्यो उपाय बताउनुहोस्। हे सौम्ये ! यो वेतको वृक्ष समात। जुन तीर्थमा रोप्दा तुरुन्तै जीवित भएर पलाउँछ, त्यसै ठाउँमा तिम्रा पनि जीवित भएर आउनेछन्। तीर्थहरूमा स्नान गर्दै सो वेतवृक्ष रोप्दै जानू, पूर्व, पश्चिम, उत्तर दिशाका तीर्थमा यो तुरुन्त उम्रिन्छ कि उम्रिँदैन भनेर परीक्षा गर्नू ॥४६–४९॥

नारदजीले भन्नुभयो– उत्सुकता जगाउँदै कुराकानी गरी ती ब्राह्मणीलाई आश्वासन दिएर सम्झाई बुझाई ती यति स्नान गरी वेतको विरुवा त्यसै ठाउँमा छोडेर आफ्नो आश्रममा गए। ती ब्राह्मणी पनि त्यो वेत लिएर पूर्व दिशाको तीर्थमा स्नान गर्न गइन्। ती यतिले जे भने, त्यो साँचै होला भन्ने ठानेर सखीहरूसँग सल्लाह गरी ती ब्राह्मणीले कौशिकी र गङ्गाजीको सङ्गममा स्नान गरेर वेत रोपी ब्रह्मपुत्र नाम गरेको परातीर्थमा स्नान गरिन्। त्यहाँ रहेको भगतीर्थमा स्नान गरेर पतिका लागि भगादेवीसँग प्रार्थना गरिन् ॥५०–५३॥

---

३४. मत्स्वान्तं हृत्य इति न.सं.पु.पाठः। ३५. विलप्य बहुशो विप्र इति न.सं.पु.पाठः। ३६. पतिना इति न.सं.पु.पाठः।
३७. येनासून् धार्यते तात इति न.सं.पु.पाठः। ३८. प्ररोहिष्यति जीवनात् इति न.सं.पु.पाठः।
३९. तर्ह्याजीव्यागमिष्यति, इति न.सं.पु.पाठः। ४०. तत् परीक्षयेत्, इति न.सं.पु.पाठः।

गङ्गासागरतीर्थेषु प्रतिमामार्चयत् यथा। पञ्चतीर्थेषु सा स्नात्वा सम्पूज्य पुरुषोत्तमम्[४१] ॥५४॥
ततो जगाम सा याम्यां सस्नौ तीर्थेषु सर्वशः। गोदावरीं समागम्य कावेरीं तमसां तथा ॥५५॥
करतोयां शिवां गङ्गां पक्षितीर्थं सरस्वतीम्। धैनवञ्च वराहञ्च सौरञ्चान्द्रं तथाऽपराम् ॥५६॥
स्नात्वा च ब्राह्मणी भक्त्या सम्पूज्य शङ्करं शिवाम्। भूयोऽगमत्प्रतीच्यां सा सस्नौ तीर्थेषु तत्र च ॥५७॥
गोकर्णेषु च तीर्थेषु ताम्रपर्णीं सरिद्वराम्। विष्णुपर्णीं मजापर्णीं रुद्रपर्णीं तथा पराम् ॥५८॥
सूर्यसुतां तथा सिन्धुं प्रभासञ्च तथा परम्। व्यासगङ्गां कुरुक्षेत्रे सुभद्रां मणिवाहिनीम् ॥५९॥
हरिद्वारेषु गङ्गायां स्नात्वा यद्यपि रूपिणी। भूयो जगाम नैमिषं पुष्करं मुनिभिर्युतम् ॥६०॥
तीर्थराजे पुनः स्नात्वा चायोध्यायां यथाविधि। रेवायां शतरुद्रायां सारस्वते च सौम्यके ॥६१॥
अश्वमेधे पुनः स्नात्वा वाराणसीं ययौ पुनः। सा मणिकर्णिकायाञ्च सस्नौ विधिपुरस्सरम्[४२] ॥६२॥
सोमतीर्थे ततः सौरे ब्रह्मतीर्थे शिवाह्वये। कपालमोचने वैन्ध्ये ज्ञानतीर्थे तथापरे ॥६३॥
काश्यां यावन्ति तीर्थानि तावत्सु च पृथक् पृथक्। उदीच्यामगमत्सा वै सस्नौ कटकदेशतः ॥६४॥
चक्रतीर्थे हरिक्षेत्रे गण्डकीनाञ्च सङ्गमे। मुक्तिभद्रे हि सा सस्नौ पद्माख्ये कमलाप्रिये ॥६५॥
हिरण्ये च भृगौ तप्ते नेपालेषु क्रमात्पुनः। नीलकण्ठेषु सा स्नात्वा गण्डकीषु क्रमात्पुनः ॥६६॥
ब्रह्मतीर्थेषु सा सस्नौ सुधाक्षीरसमागमे। रोपयन् वेत्रकं तोये विधिवत्सखीभिः समम् ॥६७॥
उमायाः प्रतिमां भक्त्या चानर्च शूलिना समम्। पूर्णिमायाञ्च माघस्य मघर्क्षेणैव संयुजि[४३] ॥६८॥

---

गङ्गासागरमा स्नान गरेर तिनले प्रतिमाको पूजा गरिन्। पञ्चतीर्थमा स्नान गरेर तिनले पुरुषोत्तमको पूजा गरिन्। त्यसपछि ती ब्राह्मणी दक्षिणतिर रहेका तीर्थमा गइन् र सबै तीर्थहरूमा स्नान गरिन्। सर्वप्रथम गोदावरीमा गएर स्नान गरिन्। त्यसपछि कावेरी, तमसा, करतोया, शिवा, गङ्गा, पक्षितीर्थ, सरस्वती, धेनुतीर्थ, वराहतीर्थ, सौरतीर्थ, चान्द्रतीर्थ र अरू तीर्थमा स्नान गरेर ती ब्राह्मणीले भक्तिपूर्वक शिवजी र पार्वतीको पूजा गरिन् अनि उनले पश्चिमतिर रहेका तीर्थहरूमा गएर स्नान गरिन् ॥५४–५७॥

गोकर्ण तीर्थ, ताम्रपर्णी, विष्णुपर्णी, अजापर्णी, रुद्रपर्णी, यमुना, प्रभास, व्यासगङ्गा, कुरुक्षेत्र, सुभद्रा, मणिवाहिनी तथा हरिद्वारमा रहेकी गङ्गामा स्नान गरी रूपवती भएर ती ब्राह्मणी मुनिहरूको समूह बसेको नैमिषारण्य क्षेत्र र पुष्कर क्षेत्रमा गइन्। त्यसपछि अयोध्याको तीर्थमा विधिपूर्वक स्नान गरेर उनी रेवा, शतरुद्रा, शान्त सारस्वत तीर्थ र अश्वमेध तीर्थमा स्नान गरी वाराणसी पुगिन्। त्यहाँ ती ब्राह्मणीले इतिले भनेझैँ गरी विधिपूर्वक मणिकर्णिकामा स्नान गरिन् ॥५८–६२॥

सोमतीर्थ, सौरतीर्थ, ब्रह्मातीर्थ, शिवतीर्थ, कपालमोचन, ज्ञानतीर्थ, विन्ध्यतीर्थ र अरू काशीमा जति पनि तीर्थ छन्, ती सबै तीर्थमा छुट्टाछुट्टै स्नान गरेर ती ब्राह्मणी कटक देशबाट उत्तरतिर लागिन्। त्यसपछि चक्रतीर्थ, हरिक्षेत्र, गण्डकीको सङ्गम भएको हरिहरक्षेत्र, मुक्तिक्षेत्र र लक्ष्मीको प्रिय पद्मतीर्थमा उनले स्नान गरिन्। हिरण्यतीर्थ, भृगुतीर्थ, तप्ततीर्थ हुँदै फेरि नेपालमा आएर ती ब्राह्मणीले नीलकण्ठ तीर्थमा स्नान गरी क्रमशः गण्डकीहरूमा स्नान गर्दै सुधा नदीको समागम भएको ब्रह्मतीर्थमा स्नान गरिन्। त्यहाँ उनले विधिपूर्वक सखीहरूका साथ मिलेर वेतको बिरुवा रोपिन्। मघा नक्षत्रले युक्त भएको माघ शुक्ल पूर्णिमाको दिन तिनले भगवान् शङ्कर र पार्वतीका प्रतिमाको पूजा गरिन् ॥६६–६८॥

---

४१. पुरुषोत्तममर्चिता इति न.सं.पु.पाठः।
४२. इतियथोदितम् इति न.सं.पु.पाठः।
४३. संयुते इति न.सं.पु.पाठः।

हृद्याधाय स्वकं नाथं सजीवं प्रार्थयन्त्यपि। सम्पूज्य विधिवद् भक्त्या शिवां शिवेन संयुताम् ॥६९॥
विनिद्रा च निराहारा ब्राह्मे प्रावाहयच्छिवाम्। कूले च धर्मतीर्थस्य ह्यद्राक्षीद्वेत्रकं हि सा ॥७०॥
सपल्लवांकुराढ्यं तद् हर्षात्तीर्थन्ननाम हि। नमोऽस्तु धर्मतीर्थाय सर्वदुष्कृतनाशिने ॥७१॥
वैधव्यं हर मे देव सञ्जीव्य वल्लभं मम। सत्यं जातमिदं सत्यं कथयन्ती मुनेर्वचः[४४] ॥७२॥
प्रणम्य सहसा तीर्थं भक्त्या सस्नौ पुनः पुनः। जलादुत्तीर्य्य हर्षात्सा याचकेभ्यो वसु ददौ ॥७३॥
आनर्च विधिवद् भूयः शिवां शिवयुतां द्विज। ततो देव्याः प्रसादेन शङ्करस्य ह्यनुग्रहात् ॥७४॥
आविर्बभूव धर्मोऽसौ जलादुत्तीर्य प्रार्थितः[४५]। स्थविरो ब्राह्मणो भूत्वा ह्याजगाम[४६] तदन्तिकम् ॥७५॥

वृद्धब्राह्मण उवाच

प्रार्थयसे कथं वत्से मृतभर्त्तारमग्रजम्। जन्मान्ते लप्स्यसे तं त्वमिह याचस्व स्वेप्सितम्[४७] ॥७६॥

सुभद्रोवाच

न प्रार्थये वसु वान्यं जन्मान्ते वेह लोकतः। तमेव प्रार्थये नाथं मां विहाय दिवङ्गतम्[४८] ॥७७॥
यदि सा[४९] जीवयेन्नैव मत्प्रियं शाङ्करी शिवा। अत्रैवासून् परित्यज्य सेविष्ये गिरिजापदम् ॥७८॥

नारद उवाच

इत्याकर्ण्याशु धर्मोऽसौ त्रस्तवान् मनसा द्विज। आश्वास्याशु सुतं दास्ये[५०] तिरोदधे ब्रुवन्निति ॥७९॥
आहूय स्वात्मजं धर्मो विनयन्तं न्यबोधयत्। आनीय कुरु त्वं तस्य सुभद्रायै[५१] समर्पणम् ॥८०॥

---

आफ्ना पतिलाई मनमा राखेर जीवित पति पाउनका लागि बारम्बार प्रार्थना गर्दै ती ब्राह्मणीले शिवजी र पार्वतीको विधिवत् भक्तिपूर्वक पूजा गरेर ननिंदाई निराहार बसिन् र ब्रह्ममुहूर्तमा शिवपार्वतीको मूर्तिलाई जलमा बगाइन्। त्यसैबखत ती ब्राह्मणीले धर्मतीर्थको तीरमा वेतको बिरुवालाई देखिन्। त्यो वेत पालुवा र आकुराले युक्त भएको थियो। त्यसपछि "हे भगवन्! पतिलाई बचाएर मेरो वैधव्य हरण गर्नुहोस् इतिले जे कुरा भन्नुभयो, त्यो साँच्चै रहेछ–साँच्चै रहेछ, सम्पूर्ण दुष्कृत्यलाई हरण गर्ने धर्मतीर्थलाई नमस्कार छ" भन्दै ती ब्राह्मणीले हर्षपूर्वक तीर्थलाई नमस्कार गरिन् ॥६९–७२॥

तिनले हत्त न पत्त तीर्थलाई भक्तिपूर्वक नमस्कार गरेर बारम्बार स्नान गरिन्। पानीबाट बाहिर निस्किएर उनले माग्नेलाई धन दिइन् ॥७३॥ हे ब्राह्मण! ती ब्राह्मणीले फेरि विधिपूर्वक पार्वती र शिवजीको पूजा गरिन्। त्यसपछि पार्वतीको कृपा र शिवजीको अनुग्रहले गर्दा पानीबाट एउटा ब्राह्मण निक्लिएर तिनको नजिकै आई भन्न थाले ॥७४–७५॥

वृद्ध ब्राह्मणले भने – हे छोरी! तिमी मरेका पतिलाई किन माग्छ्यौ? यो त अर्को जन्ममा मात्र उपलब्ध हुने कुरा हो, बरु अरू नै कुरा वा धन–दौलत माग ॥७६॥

सुभद्राले भनिन् – मलाई धनदौलत वा अरू केही कुरा चाहिँदैन, यस लोकमा बाहेक परलोकमा जन्मान्तरमा पतिसँग भेट हुने कुरा पनि म चाहन्नँ, मरेकै भए पनि उनै पतिलाई म माग्छु। यदि भगवती पार्वतीले मेरो प्रियलाई बचाउनुहुन्न भने म यसै ठाउँमा प्राण त्याग गरेर गिरिजाको पाउको सेवा गर्छु ॥७७–७८॥

नारदले भन्नुभयो – हे विरज! सुभद्राको यो कुरा सुनेर वृद्ध ब्राह्मणको रूप लिने धर्मको मनमा त्रास पैदा भयो। तुरुन्त ब्राह्मणीलाई सम्झाएर त्यसै ठाउँमा उनी अन्तर्धान भए। धर्मले विनय नाउँका आफ्ना छोरालाई बोलाउँदै सुभद्राका पति ती ब्राह्मणलाई ल्याई देवीभक्त सुभद्रालाई समर्पण गर्न अह्राए ॥७९–८०॥

---

४४. इदं सत्यमिदं सत्यं इतिनोक्तमिति ब्रुवन् इति न.सं.पु.पाठः।
४५. भाषित इति न.सं.पु.पाठः।
४६. उपगम्य इति न.सं.पु.पाठः।
४७. जन्मान्ते त्वमिहेवार्ये चापरं वा वसु तथा इति न.सं.पु.पाठः।
४८. यदि निधनमागतम् इति न.सं.पु.पाठः।
४९. यद्यपि इति न.सं.पु.पाठः।
५०. सुते दिष्टे इति न.सं.पु.पाठः।
५१. आनयितु द्विजं तत्र देवीभक्त्यै समर्पितम्, इति न.सं.पु.पाठः।

धर्म उवाच

अहो विनय गच्छाऽशु सुत त्वमविलम्बितम्। वरुणस्याश्रमं शीघ्रं ब्राह्मणं तं समानय ॥८१॥

नारद उवाच

पित्रा सम्प्रेषितो विप्रो विनयः प्रययौ ध्रुवम्। गत्वा तत्राब्रवीत् सर्वं वरुणाय नमन्पुनः ॥८२॥

तेनोक्तञ्च समाकर्ण्य सत्वरं यादसां पतिः। प्रोवाच विनयायार्यो नीयतां स द्विजस्त्वया ॥८३॥

द्विज उवाच

मामैवं गम्यते तात विना ग्राहं तदन्तिकम्। तमेवारुह्य गन्तव्यमेष सत्यो ममाशयः[५२] ॥८४॥

नारद उवाच

इत्याकर्ण्य वचस्तस्य सद्योऽब्रवीदपां पतिः। एवमेव हि याथार्थ्यं नक्रमारुह्य गम्यताम्[५३] ॥८५॥

आरुह्य साहसाद् नक्रं प्राग्विपक्षं द्विजोत्तमः। विनयेन समं तेन[५४] गङ्गावेगेन चाययौ ॥८६॥

धर्मस्तं प्रेक्ष्य हर्षाद्यो धन्योऽसि चाब्रवीत् सुतम्। आदाय ब्राह्मणं धर्मो तदन्तिकं ययौ जलात् ॥८७॥

ब्राह्मणीमभिश्रित्यासौ तस्यै द्विजं ददाविति। गृहाणैनं प्रभुं सौम्यं प्रार्थयसे यमातुरा[५५] ॥८८॥

सम्प्रेक्ष्य स्वामिनं धर्मं ब्राह्मणी दिव्यभूषितम्। संस्पृश्य पादुके नम्रं[५६] वन्दयामास सा मुहुः ॥८९॥

ब्राह्मण्युवाच

अहोभाग्यमनाथाया मृतो भर्त्ता समागतः। तीर्थस्यास्यैव विप्रस्य देवीशयोरनुग्रहात् ॥९०॥

धन्याऽस्मि कृतकृत्याऽस्मि सजीवो मत्प्रियो विभो। प्राप्याऽहं त्वत्कृते प्रश्नं किं करोमि वद[५७] ध्रुवम् ॥९१॥

---

धर्मले भने – हे छोरा विनय तिमी विलम्ब नगरी वरुणको आश्रममा जाऊ र ती ब्राह्मणलाई तुरुन्त लिएर आऊ ॥८१॥

नारदले भन्नुभयो – हे ब्राह्मण ! बाबुले पठाएको विनय तुरुन्त त्यहाँ गयो र वरुणलाई नमस्कार गरेर सबै कुरा भन्यो। विनयले भनेको सुनेर वरुणले पनि तुरुन्तै हे आर्य ! ती बाहुनलाई लिएर तिमी जाऊ भने ॥८२-८३॥

ब्राह्मणले भने – हे पूज्य वरुण ! गोही नलिईकन एक्लै म जान सक्दिनँ। म त्यही गोहीमाथि चढेर जान्छु, यही मेरो वास्तविक आशय छ ॥८४॥

नारदले भन्नुभयो – ब्राह्मणको यस्तो कुरा सुनेर तुरुन्त वरुणले भने– यदि साँच्चै त्यसै हो भने गोहीमाथि चढेर जानुहोस्। पहिले दुःख दिने त्यसै गोहीमा चढेर ब्राह्मण विनयका साथ गङ्गाजीको जलप्रवाहबाट अचानक त्यहाँ आए। धर्मले ती ब्राह्मणलाई देखेर प्रसन्न भई छोरालाई तिमी धन्य रहेछौ भन्दै ब्राह्मणलाई लिएर जलबाट निस्किई ती ब्राह्मणीको नजिकै गए। ब्राह्मणीको नजिकै गएर उनले भने – हे अनघे ! तिमीले जसलाई सधैँ माग्ने गर्थ्यौ, तिम्रा पति यिनै हुन् लेऊ भनेर ब्राह्मणलाई ब्राह्मणीको हातमा सुम्पिए। ब्राह्मणीले दिव्य वस्त्र र अलङ्कारले सुशोभित भएका आफ्ना पतिदेवलाई र धर्मलाई देखेर खराउ समाती शिर झुकाई बारम्बार प्रणाम गरिन् ॥८५-८९॥

ब्राह्मणीले भनिन् – म अनाथिनीको ठूलो भाग्य रहेछ, मरिसकेका पति पाल्नुभयो। यो सबै यसै तीर्थको, ब्राह्मणको र शिवजी तथा पार्वतीको कृपाले भएको हो। धन्य छु, कृतकृत्य छु, मेरा पति बाँच्नुभयो, मैले पाएँ। हे ब्राह्मण ! हजुरसित म के प्रश्न गरौँ ? अर्थात् हजुरलाई मैले निश्चय नै के दिन सक्छु ? भन्नुहोस् ॥९०-९१॥

---

५२. गन्तव्यं सत्यमेतद्विभो शय इति न.सं.पु.पाठः।
५३. गच्छताम् इति न.सं.पु.पाठः।
५४. तस्माद् इति न.सं.पु.पाठः।
५५. सदानघे इति न.सं.पु.पाठः।
५६. नम्रन् इति न.सं.पु.पाठः।
५७. तव इति न.सं.पु.पाठः।

नारद उवाच

श्रुत्वैतद्वचनं धर्मस्तिरोधानं ययौ जले। द्विजः प्रियां समालोक्य व्याचष्ट परिसान्त्वयन् ॥९२॥

विप्र उवाच

कथमत्रागता सौम्ये कच्चित्कुशलमस्ति ते। मद्वार्त्तां शृणु कल्याणि नक्रो मां नीतवान् प्रिये ॥९३॥

शिवप्रसादाद्वारुण्यादनुग्रहादिहागतः। प्रयास्यावो ध्रुवं सौम्ये शाङ्करीं पदवीं पराम् ॥९४॥

ब्राह्मण्युवाच

तस्माद्यतिमुखाच्छ्रुत्वा सम्भ्रम्य मेदिनीं प्रिये। चतुर्भिर्वत्सरैर्यावदिहैव प्राप्तवत्यहम् ॥९५॥

एवं संवादिते शैवा याने चाऽऽधाय तौ मुने। व्योम्ना निन्युः परं शैवं पुनरावृत्तिनाशनम् ॥९६॥

विरजः प्राप्तवाँस्तत्र हंसयानेन नारदात्। तथैतत्तीर्थमाहात्म्यं विन्द्यान्नैपालकं मुने ॥९७॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे धर्मतीर्थमाहात्म्यं नामाष्टषष्टितमोऽध्यायः ॥६८॥

---

नारदजीले भन्नुभयो – ब्राह्मणीको यो कुरा सुनेर धर्म त्यहीँ जलमा अन्तर्धान भए। ब्राह्मणले ब्राह्मणीलाई हेरेर सान्त्वना दिँदै भने ॥९२॥

ब्राह्मणले भने – हे सौम्या ! तिमी कसरी यहाँ आयौ ? के तिमीलाई आरामै त छ ? हे कल्याणी ! मेरो कुरा सुन। हे प्रिये ! मलाई गोहीले लग्यो। शिवजीको कृपा र वरुणको अनुग्रहबाट म यहाँ आएँ। हे सौम्या ! हामी अवश्य उत्कृष्ट शैवपदमा जानेछौँ ॥९३-९४॥

ब्राह्मणीले भनिन् – हे प्रिय ! कुनै इतिको भनाइ अनुसार पृथ्वी घुमेर म पनि चार वर्षमा भर्खर यहाँ आइपुगेँ ॥९५॥ यस्तो कुरा गर्दागर्दै शिवजीका गणहरूले ती दुईलाई यानमा राखेर आकाशमार्गबाट फेरि जन्मनु, मर्नु नपर्ने उत्तम शिवलोकमा पुगे ॥९६॥ विरज पनि हाँसले युक्त भएको विमानमा चढेर नारदसँग बिदा भई त्यहाँ गए। यो नेपालमा भएको तीर्थको माहात्म्य हो भनेर जान्नुहोस् ॥९७॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवतखण्डमा धर्मतीर्थको माहात्म्यवर्णननामक अठसट्ठियौँ अध्याय पूरा भयो।

# ऊनसप्ततितमोऽध्यायः

नेमुनेस्तपःसिद्धिः

अगस्त्य उवाच

निःसृतं त्वन्मुखाब्जाद्वै कथासुधारसं विभो। भूयोऽनुष्ठितवृत्तान्तमाकर्ण्य शीतलोऽस्मि वै ॥१॥
आश्चर्यं जायते स्वान्ते ममाऽङ्गस्य महत्प्रभो। हिमवतश्च माहात्म्यं श्रुत्वा तपोमयं गिरिम् ॥२॥
सर्वेषां भूधराणाञ्च गरिष्ठोऽसावभूत् कथम्[1]। तपोमयानि शृङ्गाणि स्थिरश्च हिमवान् गिरिः[2] ॥३॥
कस्मात्तेन प्रलब्धाऽसौ सर्वा तपोमयी तनुः। एतदिच्छाम्यहं श्रोतुं वद मे तद्यथा विभो ॥४॥

स्कन्द उवाच

आसीत्पशुपतिः शम्भुर्हिमवत्सानुसुन्दरे। नेपालाख्ये महापुण्ये प्राणिनां मोक्षदे स्थले[3] ॥५॥
सहस्रतीर्थसम्भूते वाग्वती यत्र राजते। मणिमती तथाऽऽख्याता वीरभद्रा तथापरा ॥६॥
धर्मनदी तथा वृद्धा सत्यनदी सरस्वती। प्रभावती त्वसौ यत्र पशुपतिर्विराजते ॥७॥
गोमती च नदी पुण्या शिखराख्या च गोस्रवा। विश्वमती शिवाधारा यत्र पशुपतिर्बभौ ॥८॥
मातृनदी महापुण्या मणिमती गिरिस्रवा। कनखला नदी यत्र पशुपतिर्विराजते ॥९॥
शक्रमार्गनदी पुण्या कालप्रभा सुखप्रभा। नारायणी नदी यत्र पशुपतिर्विराजते ॥१०॥
शमा धर्मा तथा पुण्या विष्णुपदी तथापरा। चन्द्रभागा च गौरी च यत्र पशुपतिर्बभौ ॥११॥
गोकर्णाख्यः किलेशश्च ह्यनन्तः सोमशङ्करः। शर्वेश्वरश्च भृङ्गेशो यत्र पशुपतिर्बभौ ॥१२॥
तिलेश्वरश्च गुप्तेशो गोपालेशो महाविभुः। नवलिङ्गेश्वरो यत्र पशुपतिर्विराजते ॥१३॥

---

## अध्याय – ६९

### नेमुनिको तपस्या सिद्धि

अगस्त्य मुनिले भन्नुभयो – हे कुमारजी ! हजुरका मुखारविन्दबाट निस्किएका अनेकौं पुरातन घटनाका वृत्तान्तहरूले भरिपूर्ण कथारूपी अमृतको रसपान गर्दै गर्दा मलाई अत्यन्त शीतलताको अनुभूति भएको छ। हे प्रभो ! फेरि तपोमय पर्वतहरूले बनेको हिमालयको माहात्म्य सुनेर मेरो हृदयमा आश्चर्य पैदा भएको छ। सम्पूर्ण पर्वतहरूमध्ये यो हिमालय पर्वत सबैभन्दा ठूलो र पवित्र कसरी भयो ? सबै शिखरहरू तपोमय कसरी बने ?। हिमालयले कसरी कल्याणकारी तपोमय शरीर पाए ? यो कुरा म सुन्न चाहन्छु। हे प्रभो! यथार्थ रूपमा मलाई बताइदिनुहोस् ॥१–४॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! हिमालय पर्वत शृङ्खलाको सुन्दर क्षेत्रमा अवस्थित अत्यन्त पवित्र मोक्षदायी नेपालनामक धरातलमा पशुपतिनाम भएका शिवजी बस्नुभएको छ। हजार तीर्थले युक्त भएको, जुन क्षेत्रमा वाग्मती नदी सुशोभित भएकी छन्। त्यस्तै मणिमती, वीरभद्रा, धर्मनदी, वृद्धा, सत्यनदी, सरस्वती र प्रभावती नाम गरेका नदीहरू त्यहाँ बगेका छन्। यसै ठाउँमा पशुपतिनाथ विराजमान हुनुभएको छ ॥५–७॥

जहाँ पशुपति विराजमान हुनुहुन्छ त्यसै ठाउँमा गोमती नदी, पुण्यदायिनी शिखरानदी, गोस्रवानदी, विश्वमतीनदी र शिवधारा नदी बगेका छन्। जहाँ पशुपति रहनुभएको छ त्यसै ठाउँमा मातृनदी, अत्यन्त पवित्र मणिमती नदी, गिरिस्रवा नदी र कनखला नदी बगेका छन्। जुन ठाउँमा पशुपति विराजमान हुनुहुन्छ त्यसै ठाउँमा इन्द्रमार्ग नदी, पवित्र कालप्रभा नदी, सुखप्रभा नदी र नारायणी नदी बगेका छन्। जहाँ पशुपति सुशोभित हुनुहुन्छ त्यसै क्षेत्रमा शमा, धर्मा, पवित्र विष्णुपदी, चन्द्रभागा र गौरी नदी बगेका छन्। जहाँ पशुपति रहनुभएको छ त्यसै ठाउँमा गोकर्णेश्वर, कीलेश्वर, अनन्त सोमेश्वर, सर्वेश्वर र भृङ्गेश्वर रहनुभएको छ। जहाँ पशुपति विराजमान हुनुहुन्छ, त्यसै ठाउँमा तिलेश्वर, गुप्तेश्वर, महाप्रभु गोपालेश्वर र नवलिङ्गेश्वर रहनुभएको छ ॥८–१३॥

---

१. गरिष्ठोऽसौ कथं भवेत् इति न.सं.पु.पाठः।
२. हिमवान् प्रयतः स्कन्द सर्वशृङ्गास्तपोमया इति न.सं.पु.पाठः।
३. क्षितौ इति न.सं.पु.पाठः।

यत्र विराजते देवी गुह्याख्या मुक्तिदा सदा। यत्राऽसौ योगनी चाऽऽद्या राजते गरुडध्वजः ॥१४॥
तासां नदीगरिष्ठानां मध्ये पशुपतिः प्रभुः। विराजते गणैः सार्द्धं सिद्धर्षिदेवसेविते ॥१५॥
वाग्वतीपश्चिमे तीरे सर्वदेवतपःक्षितौ। ज्योतिर्मयो[४] मुने साक्षात् पशुपतिर्विराजते ॥१६॥
दिव्यवर्षसहस्राणि हिमवान् शैलसुन्दरः। यत्र तपश्चकाराऽऽर्यः सर्वभावैर्निरन्तरम् ॥१७॥
शृङ्गोदकमहातीर्थे चाऽऽर्यातीर्थेन संयुते। स्नात्वा च हिमवांस्तत्र रुद्रमन्त्रं जजाप स ॥१८॥
ततः पञ्चोपचारैश्च भक्तिभिः तिसृभिर्युतः[५]। हिमवान्मेनया सार्द्धमपूपुजन्महेश्वरम् ॥१९॥
तमालोक्याऽऽशुतोषोऽसौ भक्तिभावान्महोत्सवैः। व्याजहार तदा तस्मै वरं दातुं महेश्वरः ॥२०॥

श्रीपशुपतिरुवाच

भक्तवर महाशैल मयि भक्तिरतोऽसि वै। सन्ततञ्च निकामेन वचोमनःकलेवरैः ॥२१॥
सन्तुष्टोऽहं तपोभिस्ते गौरीशङ्करसेवकः[६]। अतो दास्ये वरं ते च मत्तः शृणुष्व वच्मि तत् ॥२२॥
भूधराणां वरो भूयाः सर्वदा मे प्रसादतः। देवानां निलयो नित्यं हिमवान् भव सञ्चिरम् ॥२३॥
ऋषीणां निलयो भूयाः सिद्धानां भव पर्वत। किन्नराणाञ्च यक्षाणां गन्धर्वाप्सरसां पुनः ॥२४॥
राक्षसानां पिशाचानामसुराणां तथा पुनः। चतुर्विधनराणाञ्च ह्यस्माकञ्च भवालयः ॥२५॥
तपस्विनां तपोभूमिः सर्वकाले भवाऽचल। काङ्क्षितानि च तेषां वै फलन्तु तव भूमिषु[७] ॥२६॥

---

जहाँ मुक्तिदायिनी गुह्येश्वरी बस्नुभएको छ, जहाँ आद्य योगिनी बसेका छन्, त्यसै ठाउँमा गरुडध्वज भगवान् विष्णु विराजमान हुनुहुन्छ। सिद्ध, ऋषि र देवताहरूले सुसेवित, तिनै श्रेष्ठ नदीहरूको बीचको क्षेत्रमा भगवान् पशुपतिनाथ विराजमान हुनुभएको छ ॥१४-१५॥

हे अगस्त्य मुनि ! वाग्मतीको पश्चिमपट्टि सम्पूर्ण देवताहरू आएर तपस्या गर्ने क्षेत्रमा ज्योतिस्वरूप भएका भगवान् पशुपति विराजमान हुनुहुन्छ। जहाँ दिव्य एक हजार वर्षसम्म सुन्दर पर्वत हिमालयले सम्पूर्ण भावले निरन्तर तपस्या गरेका थिए। आर्यातीर्थसँग मिलेको शृङ्गोदक नाम गरेको महातीर्थमा स्नान गरेर रुद्रको मन्त्र जप्दै हिमालयले मेनाका साथै बसेर तीनै किसिमका भक्तिले युक्त भई पञ्चोपचारले महेश्वरको पूजा गरे। भक्तिपूर्वक उत्सवका साथ गरेको पूजालाई देखेर भगवान् शिवले हिमालयलाई वर दिनका लागि भन्नुभयो ॥१६-२०॥

पशुपतिले भन्नुभयो – हे भक्तवर हिमालय ! वाणी, मन र शरीरले कुनै पनि कामना नराखीकन निरन्तर मेरो भक्ति गर्‍यौ। त्यसरी तिमीले गरेको तपस्या तथा भवानीको र मेरो आराधना गरेको हुनाले म सन्तुष्ट भएँ। यसैले तिमीलाई म वर दिन्छु, सुन- हे हिमालय ! मेरो अनुग्रहबाट तिमी सदाका लागि सबै पर्वतहरूभन्दा उत्तम हुनेछौ। तिमी धेरै कालसम्म देवताको वासस्थान होऊ। हे हिमालय पर्वत ! तिमी ऋषि, सिद्ध, किन्नर, यक्ष, गन्धर्व, अप्सरा, राक्षस, पिशाच, असुर, चारै किसिमका मानिसहरूको र हाम्रो पनि आश्रयस्थल बन। हे हिमालय ! तिमी धेरै समयसम्म तपस्वीहरूको तपोभूमि बन। तिम्रा भू-भागहरूले उनीहरूले आकाङ्क्षा राखेका फललाई दिन सकून् ॥२१-२६॥

---

४. ज्योतीरूप इति न.सं.पु.पाठः।
५. त्रिविधैर्भक्तिपूर्वक इति न.सं.पु.पाठः।
६. मां भवानीपरायणात् इति न.सं.पु.पाठः।
७. फलदा भूमयो हि ते इति न.सं.पु.पाठः।

यावन्ति तव शृङ्गाणि सन्ति भक्त हि सन्ततम्। तावन्ति च पवित्राणि भवन्तु मत्प्रसादतः ॥२७॥
ये तपांसि करिष्यन्ति स्वल्पं वा बहुशस्तथा। ते प्राप्स्यन्ति[८] फलं शीघ्रं तद्वाञ्छितं च तादृशम् ॥२८॥
या आपो निःसृतास्त्वत्तः सन्तु ताः तीर्थताङ्गताः[९]। ता स्वप्सु प्लवमानानां पुण्यानि स्युः पदे पदे[१०] ॥२९॥
आरोहणं करिष्यन्ति तव शृङ्गे नरोत्तमाः। तावत्फलं प्राप्नुवन्तु[११] वाजपेयाश्वमेधयोः ॥३०॥
सप्तजन्मार्जितैः पापैस्ते निर्मुक्तास्त्रिविष्टपम्। तत्तत्फलं समालभ्य गमिष्यन्तु पदे पदे ॥३१॥
दूरात्पश्यति यस्त्वां वै हिमरूपैर्विभूषितम्। धर्मी मुक्तः स चैनोभिरेकसंवत्सरार्जितैः ॥३२॥
गच्छ भूधरराजेन्द्र मत्प्रसादात्सुखं मुदा। लिङ्गमेकञ्च संस्थाप्य स्वनाम्ना हि मदन्तिके ॥३३॥

स्कन्द उवाच

तदुत्तरे स्थले रम्ये हिमवान् भक्तिपूर्वकम्। संस्थाप्याऽश्ममयं लिङ्गं स्वनाम्नाऽपूजयन्मुदा ॥३४॥
हिमवदीश्वरश्चेति ह्यभिधानेन भक्तितः। सम्पूज्य विधिवल्लिङ्गं लभेत तत्फलं[१२] पुनः ॥३५॥
मेना चैव महाभक्त्या गुह्येश्वरीमपूजयत्। पञ्चोपहारकैर्नित्यमहर्निशं महोत्सवैः ॥३६॥
नित्यञ्च पूजितवती स्वामिना[१३] सह भक्तितः। पशुपतिं भवानीञ्च बहुकालं निनाय सा ॥३७॥
एकदा दिवसे मेना भवानीं तां ददर्श सा। विद्युदिव निमेषेण तत्रैवार्चयितुं गता ॥३८॥
सुन्दरीं सर्वदा गौरीं तेजोमयकलेवराम्[१४]। त्रिनेत्रां सुरवन्द्यां तां सर्वाभरणभूषिताम् ॥३९॥
प्रणम्य शिरसा भूमौ सस्मार सुधिया च ताम्। तादृशीं सुन्दरीं[१५] पुत्रीमिच्छन्ती सा मनोरथैः ॥४०॥
ततो मनोरथं तस्यै सर्वदिवगुहाशया। तिरोहिताऽपि तत्रैव सर्ववन्द्या ददौ तदा ॥४१॥

---

हे भक्त ! जति तिम्रा शिखरहरू छन्, मेरो अनुग्रहले गर्दा ती सधैँका लागि पवित्र बनून्। जसले हिमालय पर्वतमा गएर थोरै वा धेरै तपस्या गर्छ त्यसले तपस्या अनुसार इच्छा लागेको फल तुरुन्त पाउनेछ। तिमीबाट जे-जति जलधारा निस्कन्छन् ती सबै तीर्थ बनून्। ती जलधारामा स्नान गर्ने व्यक्तिहरूलाई बारम्बार ती जलधाराहरू फलदायक बनून्। मानिसहरूले तिम्रा शिखरमा जति-जति आरोहण गर्नेछन् तिनीहरूले वाजपेय र अश्वमेध यज्ञ गरेको त्यति-त्यति फल पाउनेछन्। सात जन्मदेखि गर्दै आएका पापबाट मुक्त भएर तिनीहरू ती-ती फललाई पाइलैपिच्छे उपभोग गरेर स्वर्ग जानेछन्। जसले हिउँद्वारा सुशोभित भएका तिमीलाई टाढैबाट हेर्छ, त्यो धर्मात्मा एक वर्षसम्म गरेको पापबाट मुक्त हुन्छ। हे पर्वतराज हिमालय ! मेरो नजिकै आफ्नो नामले युक्त भएको एउटा लिङ्ग स्थापना गर अनि मेरो अनुग्रहले गर्दा आनन्दित हुँदै जाऊ ॥२७-३३॥

कार्तिक स्वामीले भन्नुभयो- त्यसैको उत्तरपट्टिको क्षेत्रमा हिमालयले भक्तिपूर्वक आफ्नो नामले अङ्कित शिलाको लिङ्ग स्थापना गरी आनन्दसित पूजा गरे। हिमवदीश्वर नाम गरेको लिङ्गलाई विधिपूर्वक भक्तले पूजा गऱ्यो भने ठूलो फल प्राप्त हुन्छ। मेनाले पनि ठूलो भक्तिका साथ महान् उत्सव गरेर रातदिन पञ्चोपचारले गुह्येश्वरीको पूजा गरिन्। उनले पतिका साथै बसेर भक्तिपूर्वक पशुपति र भवानीको पूजा गर्दै धेरै समय बिताइन् ॥३४-३७॥

एक दिन मेनाले त्यहाँ पूजा गर्न जाँदा एक निमेष जति बिजुलीजस्तै चम्किएकी भवानीलाई देखिन्। त्यसपछि मेनाले अत्यन्त गोरो वर्ण भएकी, सम्पूर्ण तेजले युक्त भएको शरीर भएकी, तीनवटा आँखाले युक्त भएकी, देवताद्वारा वन्दनीय तथा सम्पूर्ण गहनाले विभूषित ती सुन्दरी भवानीलाई नमस्कार गरिन् र उनीजस्तै छोरी जन्माउने कामना गर्दै उनले हृदयदेखि नै भवानीको स्मरण गरिन्। सबै देवताको हृदयमा निवास गर्ने, सबैकी पूजनीय भवानी त्यसै बेला त्यहीं अन्तर्धान हुनुभयो। कुराकानी हुन नपाए पनि उहाँले मेनाको मनमा लागेको फल दिनुभयो ॥३८-४१॥

---

८. लभिष्यन्ति इति न.सं.पु.पाठः।
९. यज्जला निःसृतास्त्वत्तस्तीर्था भवन्तु तज्जला इति न.सं.पु.पाठः।
१०. तत्तज्जलाप्लवनानाञ्च फलदाश्च पुनः पुन इति न.सं.पु.पाठः।
११. लभिष्यन्तु इति न.सं.पु.पाठः।
१२. तत्र लभेत्फलम् इति न.सं.पु.पाठः।
१३. पतिना इति न.सं.पु.पाठः।
१४. सर्वतेजोमयीं तनुम् इति न.सं.पु.पाठः।
१५. रूपिणीम् इति न.सं.पु.पाठः।

ततो मेना तदा मेने कृतार्थं स्वकलेवरम्। अपि ज्ञानवती लब्धं वरं तद्दर्शनान्मुदा ॥४२॥
हिमवान् मेनया सार्द्धं व्योमकूटं ययौ मुदा। वाञ्छितञ्च वरं लब्ध्वा संस्मृत्येशं पदे पदे ॥४३॥
तस्माद्देवी स्वयं जज्ञे मेनायां पार्वती मुने। तस्यै दत्वा वरं पूर्वं तपसा च सुवाञ्छितम् ॥४४॥

अगस्त्य उवाच

नेपाल इति विख्यातो भवता स्कन्द चर्चितः[१६]। महच्चित्रं फलं तस्य[१७] पुरा हिमवता श्रुतम् ॥४५॥
किं विशिष्टञ्च तत्क्षेत्रं परिमाणं हि तस्य च। किं फलं लभ्यते मर्त्यैस्तत्र कृत्वा शुभाशुभम् ॥४६॥
भक्तवत्सल सेनानीः तच्छ्रवणाय साम्प्रतम्। प्रेरितोऽहं धिया भूयस्तन्माहात्म्यं वदाधुना ॥४७॥

स्कन्द उवाच

अहो धन्यतमोऽगस्त्य धर्मशीलो न संशयः। यतश्चैवेदृशी बुद्धिः संभूता लोकतारिणी ॥४८॥
नेपालस्य च माहात्म्यं श्रवणायाधुना हि ते। सुनिष्ठा जायते भूयः सर्वजनोपकारकम् ॥४९॥
भक्तोऽसि त्वं ममागस्त्य दयाधर्मरतः सदा। शृणु वत्स प्रवक्ष्यामि तन्माहात्म्यं महत्फलम् ॥५०॥
नेनामार्यो मुनिर्धीमान् ह्यासीत्पुरा महातपाः। मरीचेस्तनयश्चैकः सर्वसत्त्वदयापरः ॥५१॥
दान्तश्च सर्वभूतेषु कृपाशीलश्च सर्वदा। दानधर्मरतो नित्यं सत्यवादी जितेन्द्रियः ॥५२॥
तेन तप्तं तपस्तीव्रं यत्रास्ते योगिनी मुने। द्वादशाब्दं पुरा व्याप्य कठोरं महदद्भुतम् ॥५३॥
सप्तर्षिभिः समं भक्त्या शैलकोष्ठे तु नेमुनिः। आनर्च्च योगिनीं देवीं त्वष्ट्रा सुनिर्मितैस्तवैः ॥५४॥
तस्यैव तपसा देवी भृशं तुतोष भक्तितः। वरं दातुं ततस्तस्मै चाऽऽविर्भूता च योगिनी ॥५५॥

---

मेनाले पनि उहाँको दर्शन पाएको हुँदा प्रसन्न भएर मैले वर पाएँ भन्ने ज्ञान भएकी मेनाले आफ्नो शरीरलाई कृतार्थ सम्झिइन्। हिमालय आफूले चाहेको फल प्राप्त गरेर पाइलैपिच्छे भगवान् शङ्करलाई सम्झँदै मेनाका साथ प्रसन्न भएर व्योमकूटमा गए। त्यसैले गर्दा पार्वती स्वयम् मेनाको गर्भबाट पैदा हुनुभयो। भवानीले मेनालाई उनले पहिले गरेको तपस्याको फल दिनुभयो ॥४२-४४॥

अगस्त्य मुनिले भन्नुभयो - हे कार्तिक स्वामी ! तपाईंले नेपाल नामले प्रसिद्ध क्षेत्रको माहात्म्य बताउनुभएको थियो। हिमालयले विचित्र किसिमको फल त्यहाँबाट प्राप्त गरे भन्ने कुरा मैले सुनें। त्यस क्षेत्रका विशेषताहरू के-के हुन् ? त्यसको परिमाण कति छ ? त्यहाँ पुण्य कर्म गर्नाले मानिसहरूले राम्रो नराम्रो के-कस्तो फल पाउँछन् ? हे कार्तिक स्वामी ! हजुर भक्तका प्रिय हुनुहुन्छ। तेपालको महिमा सुन्ने इच्छा जागेको छ। त्यसैले त्यसको माहात्म्य बताउनुहोस् ॥४५-४७॥

कार्तिक स्वामीले भन्नुभयो - हे अगस्त्य ! तपाईं धन्य हुनुहुन्छ, धर्मात्मा हुनुहुन्छ, यसमा शङ्का छैन, किनभने दुनियाँलाई तार्ने खालको बुद्धि तपाईंको छ। सबै मानिसहरूलाई उपकार गर्ने खालको नेपालको माहात्म्य सुन्न तपाईंको श्रद्धा जागेको छ। हे अगस्त्य मुनि ! तपाईं मेरा भक्त हुनुहुन्छ, दया र धर्ममा सधैं तत्पर हुनुभएको छ। हे बाबु ! ठूलो फल दिने त्यस क्षेत्रको माहात्म्य बताउँछु, सुन्नुहोस् ॥४८-५०॥

हे अगस्त्य मुनि ! अघि मरीचि ऋषिका छोरा, सम्पूर्ण प्राणीमाथि दया गर्ने र महातपस्वी ने-नाम गरेका एक बुद्धिमान् मुनि थिए। उनी सबै प्राणीहरूमाथि दया र सधैं कृपा गर्थे, दानधर्ममा सधैं तत्पर हुन्थे, सत्य बोल्थे र जितेन्द्रिय थिए। हे अगस्त्य मुनि ! जहाँ योगिनी रहेकी थिइन्, त्यसै ठाउँमा उनले बाह्र वर्षसम्म आश्चर्यजनक कठिन तपस्या गरे। ती ने मुनिले सप्तर्षिहरूका साथ पहाडको गुफामा बसेर त्वष्ट्राले बनाएका स्तुतिहरू पढ्दै योगिनीको पूजा गरे। भक्तिपूर्वक गरेको तिनको तपस्याबाट योगिनीदेवी प्रसन्न हुनुभयो र तिनलाई वर दिनका लागि प्रादुर्भाव हुनुभयो ॥५१-५५॥

---

१६. मेऽधुना इति न.सं.पु.पाठः। १७. लब्धम् इति न.सं.पु.पाठः।

देव्युवाच

भो भक्त नेमुनिश्रेष्ठ तपसा ते च सन्ततम्। तुष्टोऽहं ते वरं दास्ये शृणु पुत्र समाहितः ॥५६॥
त्वं सिद्धो भव भक्तेषु देहेनाऽनेन हे मुने[१८]। अद्यादि क्षयपर्यन्तं ततो मयि प्रलीयसे ॥५७॥
त्वञ्च पालय हे वत्स चेदं स्थानं निरन्तरम्। वरं पशुपतेः क्षेत्रं धर्मो धर्मेण रक्ष्यते[१९] ॥५८॥
ततो लोका वदिष्यन्ति तेऽभिधानेन सन्ततम्। त्रैलोक्यानां गरिष्ठोऽयं नेपाल इति सर्वतः ॥५९॥
द्वीपानाञ्चैव सप्तानां जम्बूद्वीपो महत्तमः[२०]। तस्मिँश्चैव गरिष्ठञ्च वाराणसीस्थलं महत् ॥६०॥
तस्माच्चतुर्गुणं ज्ञेयं श्रेष्ठक्षेत्रञ्च कामदम्। भुक्तिमुक्तिप्रदं साक्षात्पशुपतिस्थलं महत् ॥६१॥
नित्यं पशुपतिं पुत्र समभ्यर्च्य सुभक्तितः। स्थित्वा तत्रैव सम्यक् त्वमेतत्क्षेत्रं प्ररक्षय ॥६२॥
ततः कालान्तरे भूयः तत्क्षेत्रं बहुवत्सरम्। वाग्वतीजलसम्पूर्णं नदीभूतं[२१] भविष्यति ॥६३॥

स्कन्द उवाच

देव्याश्चाऽऽज्ञां समादाय लब्धलाभश्च नेमुनिः[२२]। धर्मेणाऽपालयत् क्षेत्रं पाशुपतं हि सन्ततम् ॥६४॥
लोकान् प्रबोधयन् सम्यक् नियमञ्च विबोधयन्। व्रतोपवासपूजाभिः क्षेत्रमरक्षयन्मुनिः ॥६५॥
ततो हि नेपाल इति प्रतिष्ठा देवासुरैश्चाऽपि हि सर्वलोकैः।
देव्याः प्रसादाद् वरमाप्य तेन ने-नामकेनैव तपोविधानात् ॥६६॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे गिरिराजनेमुन्योस्तपःसिद्धिर्नामोनसप्ततितमोऽध्यायः ॥६९॥

---

देवीले भन्नुभयो – हे भक्त न मुनि ! तिमीले निरन्तर गरेको तपस्याबाट म प्रसन्न भएँ। हे छोरा ! एकचित्त भएर सुन, म तिमीलाई वर दिन्छु। हे मुनि ! तिमी यसै शरीरले भक्तहरूका बीचमा आजदेखि प्रलयसम्म सिद्ध भएर बस। त्यसपछि ममा नै विलीन हुनेछौ। हे बाबु ! तिमीले धर्मद्वारा सुरक्षित यस पशुपतिको धार्मिक क्षेत्रलाई धर्मपूर्वक सधैँ पालना गर। त्यसपछि मानिसहरूले तिम्रै नामबाट तीनै लोकमा श्रेष्ठ रहेको यस क्षेत्रलाई नेपाल भनेर सबैतिर भन्नेछन्। सात द्वीपहरूमध्ये जम्बूद्वीप सबैभन्दा उत्तम मानिन्छ। त्यस पनि वाराणसी क्षेत्र अझै उत्तम छ। त्यसभन्दा पनि चार गुणा श्रेष्ठ नेपालक्षेत्र छ। साक्षात् पशुपतिको स्थल भएको र सबै कामना पूर्ण गर्ने यस क्षेत्रले मानिसहरूलाई इच्छाअनुसारको भुक्ति र मुक्ति दिन्छ। हे छोरा ! तिमी सधैँ त्यहाँ बसेर भक्तिपूर्वक पशुपतिको पूजा गरी यस क्षेत्रको रक्षा गर ॥६२॥ धेरै वर्ष बितेपछि त्यहाँ जलले परिपूर्ण भएकी वाग्वती नाम गरेकी नदीको प्रादुर्भाव हुनेछ ॥५६-६३॥

कार्तिक स्वामीले भन्नुभयो– त्यसपछि देवीबाट वर प्राप्त गरेर उहाँको आज्ञा अनुसार नेमुनिले पशुपति क्षेत्रलाई धर्मपूर्वक निरन्तर पालना गरे। मानिसहरूलाई सम्झाई-बुझाई धर्मका नियमहरू बताउँदै व्रत, उपवास, पूजा आदिद्वारा नेमुनिले त्यस क्षेत्रको रक्षा गरे। त्यसपछि देवता, असुर तथा मानिसले नेपालको निकै प्रतिष्ठा गरे। देवीको प्रसादबाट वरदान पाएका जितेन्द्रिय नेमुनिले तपस्या गरेको हुँदा यस क्षेत्रलाई नेपाल भनियो ॥६४-६६॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा गिरिराज र नेमुनिको तपःसिद्धिनामक उनान्सत्तरियौं अध्याय पूरा भयो।

---

१८. अनेन तनुना मम इति न.सं.पु.पाठः।
१९. धर्मं धर्मेण रक्षितम् इति न.सं.पु.पाठः।
२०. गरीयस इति न.सं.पु.पाठः।
२१. वाग्मती जलसंपूर्णा नदी भूता इति न.सं.पु.पाठः।
२२. लब्धवरो मुनीश्वर इति न.सं.पु.पाठः।

# सप्ततितमोऽध्यायः

## नेपालमहिमा

### स्कन्द उवाच

गण्डकी कौशिकी चैव तयोर्मध्ये वरस्थलम्। नीलकण्ठतटे पूतं[1] तयोः पुनस्तथाविधम् ॥१॥
नेपाल इति विख्यातं देवक्षेत्रं सुखप्रदम्। ज्ञेयमगस्त्य तत्क्षेत्रं हिमवत्सानुसुन्दरम् ॥२॥
पर्वतस्य च माहात्म्यं तीर्थस्य च विशेषतः। श्रूयतामभिधास्यामि पुराणं पुण्यविस्तरम् ॥३॥
ब्रह्मणो वरदानेन सदारो देवपूजनात्। अपत्यानां शतं लेभे हिमवानचलाधिपः ॥४॥
उशीरवीजशैलेश ओच्छत्रकस्तथापरः। उज्जयन्तश्च कासुन्दश्चित्रह्रदश्च सुह्रदः ॥५॥
केतुमान् मणिमान् गोमान् काश्मीरश्चैव धेनुमान्। सुनाभश्चक्रनाभश्च व्याघ्रवान् पुष्पकस्तथा ॥६॥
वैतरणः सुनेमिश्च श्यामाको वृषभस्तथा। चक्रो द्रोणश्च काकन्दः ककुदः स्कन्द एव च ॥७॥
कुञ्जश्चैव निकुञ्जश्च मुकुन्दः खण्डवस्तथा। शिवकूटः सुवेलश्च पारिपात्रस्तथापरः ॥८॥
मृगेन्द्राद्रिस्तथा श्रेष्ठो मुञ्जवानचलाधिपः। सिद्धाश्रमश्च दोलाद्रिः मणिधातुश्तथापरः ॥९॥
चन्द्रवान् पुण्यवाँश्चैव कालाद्रिः ऋष्यवांस्तथा। सर्वौषधिर्विशालाद्रिस्तथा चन्दनपर्वतः ॥१०॥
स्वर्गसोपानशैलेन्द्रः शक्रमार्ग इति श्रुतः। उशीरबीजशैलस्य दक्षिणे स विराजते ॥११॥
मध्ये सर्वगरिष्ठानामेतेषां क्ष्माभृतां मुने। पाशुपतं महाक्षेत्रं सन्ततं प्रविराजते ॥१२॥
एतैः सार्द्धं भृशं भूयः सततं हि घटोद्भव। क्षेत्रं नैपालकं पुण्यं तीर्थैर्लिङ्गैस्तथामरैः ॥१३॥
आदिलिङ्गं[2] स्थितं यत्र कौशिक्याश्च तटोत्तमे। कुशेश्वर इति ख्यातं[3] तन्नेपालो विराजते ॥१४॥
भीमेश्वरो हि यत्रास्ते भीमसेनसदार्चितः। कौशिक्याः सङ्गमे तीरे देवतीर्थाह्वयेऽनिशम् ॥१५॥

---

## अध्याय - ७०

## नेपालको महिमा

कार्तिक स्वामीले भन्नुभयो – गण्डकी र कौशिकीको बीचमा नीलकण्ठको तटमा सबैलाई सुख दिने प्रसिद्ध नेपाल नाम गरेको देवताहरूको क्षेत्र छ। यो हिमालयको सुन्दर शिखर हो भनेर हे अगस्त्य मुनि ! जान्नुहोस्। हे अगस्त्य मुनि ! त्यसभित्रका पर्वतको र विशेष गरी पुराना पुण्यतीर्थको के महत्त्व छ ? बताउँछु, सुन्नुहोस् ॥१-३॥

मेनासहित भएर देवताको पूजा गरेको हुनाले ब्रह्माबाट वर प्राप्त गरेर पर्वत हिमालयले सय सन्तान पैदा गरे। उशीरबीज, ओच्छत्रक, उज्जयन्त, कासुन्द, चित्रह्रद, सुह्रद, केतुमान्, मणिमान्, गोमान्, कामीर, धेनुमान्, सुनाभ, चक्रनाभ, व्याघ्रवान्, पुष्पक, वैतरण, सुनेमि, श्यामाक, वृषभ, चक्र, द्रोण, काकन्द, ककुद, स्कन्द, कुञ्ज-निकुञ्ज, मुकुन्द, खण्डव, शिवकूट, सुवेल, पारिमात्र, मृगेन्द्र, श्रेष्ठ पर्वतराज मुञ्जवान्, सिद्धाश्रम, दोलाद्रि, मणिधातु, चन्द्रवान्, पुण्यवान्, कालाद्रि, ऋष्यवान्, सर्वोषधि, विशालाद्रि, चन्दन पर्वत आदि रहेका छन् ॥४-१०॥

शैलराज स्वर्ग सोपान शक्रमार्गका नामले प्रसिद्ध यो उशीरबीज पर्वतको दक्षिणमा छ। उत्कृष्ट यी पर्वतहरूका बीचमा हे अगस्त्य मुनि ! पाशुपत महाक्षेत्र रहेको छ। उनीहरूका साथ तीर्थहरू, लिङ्गहरू, देवताहरूका साथै नेपालक्षेत्र सधैं अत्यन्त सुशोभित रहेको छ। कोशीको उत्तम तीरमा आदिलिङ्ग रहेको छ। नेपालमा रहेको त्यो तीर्थ कुशेश्वर नामले प्रसिद्ध छ। देवतीर्थ र कोशी नदीको सङ्गममा भीमसेनले पूजा गरेका भीमेश्वर महादेव हुनुहुन्छ ॥११-१५॥

---

१. शौचम् इति न.सं.पु.पाठः।
२. आदिलिङ्ग इति न.सं.पु.पाठः।
३. ख्यात इति न.सं.पु.पाठः।

भीमतीर्थञ्च यत्राऽऽस्ते कौशिक्याः सङ्गमे शुभे। भीमसेनश्च तत्राऽऽस्ते स नेपालो[४] हि भासते ॥१६॥
काफीश्वराभिधं लिङ्गं[५] गणैः सार्द्धं विराजते। सन्ततं चैव यत्राऽऽस्ते स नेपालो[६] विराजते ॥१७॥
कश्यपेशो हि यत्राऽसौ विराजते हि सन्ततम्। महाह्रदान्तरे विप्र ऋषिभिः सेवितोऽनिशम् ॥१८॥
स्फटिकेशो हि यत्राऽऽस्ते शिलोच्चये गणैः समम्। गन्धर्वैः पूजितो नित्यं स नेपालो[७] विराजते ॥१९॥
चण्डेश्वरो महोग्रास्यश्चण्डिकायाः समं स्थितः। लोकवाञ्छाकरो यत्र स नेपालो हि भासते ॥२०॥
धनेश्वरः स्थितो यत्र चतुःषष्टिगणैः समम्। भक्ताय वसुदः पूर्णः स नेपालो विराजते ॥२१॥
विकटेशमहालिङ्गं सुरलोकैः प्रसेवितम्[८]। रुद्रगणैः समं नित्यं यत्र विराजते भृशम् ॥२२॥
इन्द्रेश्वरमहालिङ्गमिन्द्रेप्सितफलप्रदम्[९]। रुद्राण्या सहितं यत्र स नेपालो[१०] हि राजते ॥२३॥
तिलेश्वरः स्थितो यत्र प्रमथैरमरैः समम्। गङ्गया च सरस्वत्या स नेपालो हि राजते ॥२४॥
चम्पकेशो हि यत्राऽऽस्ते सर्वदेवैः समं सदा। भक्तानां वरदो देवः स नेपालो विराजते ॥२५॥
रामेश्वरः स्थितो यत्र प्रभातीर्थोत्तमोत्तमे। अत्यन्तमर्चितो लोकैः[११] स नेपालो विराजते ॥२६॥
नटारम्भेश्वरो यत्र गिरिकूटे समं गणैः। गन्धर्वैश्चाऽप्सरोभिश्च स नेपालो हि राजते ॥२७॥
कालेश्वरो हि यत्राऽऽस्ते देव्याः कालगणैः समम्। राजते घर्घरातीरे स नेपालो विराजते ॥२८॥

---

कौशिकी नदीको सङ्गममा रहेको कल्याणदायक भीमतीर्थ जहाँ छ, त्यहाँ भीमसेन पनि बस्नुभएको छ। यस्तो नेपालक्षेत्र अत्यन्त सुशोभित छ। जहाँ काफीश्वर महादेव आफ्ना गणहरूका साथै निरन्तर बस्नुभएको छ, त्यस्तो नेपाल देश रहेको छ। हे अगस्त्य मुनि ! ठूलो दहभित्र निरन्तर ऋषिले सेवा गरिएका कश्यपेश्वर भगवान् जहाँ सधैँ बस्नुहुन्छ, जुन पर्वतको शिखरमा आफ्ना गणहरूका साथ गन्धर्वले पूजित भएर स्फटिकेश्वर रहनुभएको छ, यस्तो देवताहरूको उपस्थितका कारण नेपाल अत्यन्त सुशोभित छ। ठूलो र डरलाग्दो मुख भएका सबै मानिसहरूको इच्छा पूर्ण गर्ने चण्डेश्वर भगवान् चण्डिकाका साथ जहाँ रहनुभएको छ, उहाँले गर्दा यो नेपाल क्षेत्र अत्यन्त सुशोभित छ ॥१६–२०॥

जहाँ चौसट्ठी गणलाई साथमा लिएर भक्तहरूलाई सम्पत्ति दिने पूर्णावतार धनेश्वर बस्नुभएको छ, त्यो नेपाल देश अत्यन्त सुशोभित छ। जहाँ देवताहरूले सेवा गरिएका विकटेश्वर महालिङ्ग रुद्रगणका साथ सधैँ विराजमान हुनुहुन्छ, जहाँ इन्द्रको इच्छा पूर्ण गर्ने इन्द्रेश्वर महालिङ्ग रुद्राणीका साथ रहनुभएको छ, त्यो नेपाल देश सुशोभित छ। जहाँ प्रथम आदि गरिएका गण र देवताहरूका साथ तिलेश्वर भगवान् रहनुभएको छ, त्यस्तो गङ्गा र सरस्वती नदीको बीचमा रहेको नेपाल देश सुशोभित छ। जहाँ सबै देवताहरूका साथ भक्तलाई वर दिने चम्पकेश्वर महादेव रहनुभएको छ, त्यस्तो नेपाल देश सुशोभित छ। उत्तम प्रभातीर्थमा दुनियाँले पूजा गरिएका रामेश्वर भगवान् रहनुभएको छ, उहाँले गर्दा यो नेपाल सुहाएको छ। जहाँ गन्धर्व र अप्सराका साथ नटारम्भेश्वर भगवान् बस्नुभएको छ, त्यो नेपाल देश सुशोभित छ। जहाँ घर्घरानदीको तीरमा देवी र कालका गणहरूका साथ भगवान् कालेश्वर रहनुभएको छ, त्यो नेपाल अत्यन्त विराजमान छ ॥२१—२८॥

---

४. तन्नेपाल इति न.सं.पु.पाठः।
५. काफीश्वरो महालिङ्ग इति न.सं.पु.पाठः।
६. तन्नेपाल इति न.सं.पु.पाठः।
७. तन्नेपाल इति न.सं.पु.पाठः।
८. विकटेशो महालिङ्गः सुरलोकैः प्रसेवित इति न.सं.पु.पाठः।
९. इन्द्रेश्वरो महालिङ्ग इन्द्रेप्सितफलप्रद इति न.सं.पु.पाठः।
१०. संस्थितो यत्र तन्नेपाल इति न.सं.पु.पाठः।
११. असमर्चितः परमं लोकैः, इति न.सं.पु.पाठः।

उद्दालकेश्वरो यत्र सर्वर्षिभिश्च सेवितः। भक्तानां वरदो नित्यं स नेपालो विराजते ॥२९॥
गोपालेशः स्थितो यत्र प्रमथैश्च सुरैः समम्। देवीदेवार्चितो नित्यं स नेपालो विराजते[१२] ॥३०॥
चम्पेश्वरो हि यत्राऽऽस्ते स नेपालो विराजते। उन्मत्तेशो हि यत्राऽऽस्ते स नेपालो विराजते ॥३१॥
नन्दिकेश्वर आस्ते च देवसिद्धर्षिसेवितः। राजते सह भैरव्या स नेपालो हि राजते ॥३२॥
गोखुरेश्वर आस्ते वै गवां तीर्थतटेऽनिशम्। प्रमथैः सेवितो भक्त्या स नेपालो हि भासते ॥३३॥
पाण्डवेशमहालिङ्गं देवैः सिद्धैः प्रसेवितम्[१३]। भवान्या सहितं यत्र स नेपालो[१४] हि भासते ॥३४॥
कूटेश्वरो महारुद्रो यत्राऽऽस्ते ऋषिभिः सह। राक्षसैः पूजितो नित्यं स नेपालोऽभिभासते ॥३५॥
असितेशो हि यत्राऽस्ते वनस्पतिसमर्चितः। क्ष्माभृतो गह्वरे रम्ये स नेपालो हि भासते ॥३६॥
भैरवेशो हि यत्राऽऽस्ते संहृत्य सकलान् क्षितौ। धर्मधारातटे तोये स नेपालो हि भासते ॥३७॥
ब्रह्मेश्वरो हि यत्रास्ते देवैश्च प्रमथैः समम्। वनस्पतिगणैर्नित्यं सेव्यते सततं मुदा ॥३८॥
शतरुद्रेश्वरो यत्र यक्षगन्धर्वकिन्नरैः। सेवितो वरदस्तेषां स नेपालो विराजते ॥३९॥
कार्त्तिकेयेश्वरो यत्र सुन्दर्यद्रिसुशेखरे। किरातैः सेवितो नित्यं स नेपालो विराजते ॥४०॥
काकेश्वरो हि यत्राऽऽस्ते भृगुतीर्थस्य कन्दरे। सुन्दर्या सहितो रुद्रः स नेपालो हि भासते ॥४१॥
मणिचूडेश्वरो यत्र मणिपर्वतमस्तके[१५]। गन्धर्वैः सेवितो नित्यं स नेपालो विराजते ॥४२॥

---

जहाँ सम्पूर्ण ऋषिहरूले सेवा गरिएका भक्तलाई वर दिने उद्दालकेश्वर भगवान् रहनुभएको छ, त्यो नेपाल क्षेत्र अत्यन्त सुशोभित छ। जहाँ देवताद्वारा सेवा गरिएका गोपालेश्वर भगवान् देवी, प्रमथगण र देवताहरूका साथ सधैँ बस्नुहुन्छ, त्यो नेपाल विराजमान छ। जहाँ चम्पेश्वर भगवान् बस्नुभएको छ, त्यो नेपाल सुशोभित छ। जहाँ उन्मत्तेश्वर भगवान् रहनुभएको छ, त्यो नेपाल विराजमान छ। जहाँ देवता, सिद्ध र ऋषिहरूद्वारा सुसेवित नन्दिकेश्वर भगवान् भैरवीका साथ बस्नुभएको छ, त्यो नेपाल सुहाएको छ। जहाँ श्रेष्ठ गोतीर्थका तटमा प्रमथगणद्वारा भक्तिपूर्वक सेवित भएर गोखुरेश्वर महादेव बस्नुभएको छ, त्यो नेपाल विराजमान छ। जहाँ देवता र सिद्धद्वारा सेवित पाण्डवेश्वर महालिङ्ग भवानीका साथ रहनुभएको छ, त्यो नेपाल विराजमान छ॥२९-३४॥

जहाँ राक्षसद्वारा पूजित कूटेश्वर भगवान् ऋषिका साथ बस्नुभएको छ, त्यो नेपाल विराजमान छ। जहाँ पहाडको सुन्दर गुफाभित्र वनस्पतिहरूद्वारा सुसज्जित असितेश्वर महादेव बस्नुभएको छ, त्यो नेपाल विराजमान छ। जहाँ पृथ्वीका सम्पूर्ण प्राणीहरूलाई संहार गरेर धर्मधारा नदीको तटमा जलभित्र भैरवेश्वर महादेव रहनुभएको छ, त्यो नेपाल विराजमान छ। जहाँ देवता र प्रमथगणहरूका साथ वनस्पतिद्वारा सुसेवित ब्रह्मेश्वर महादेव सधैँ आनन्दपूर्वक रहनुहुन्छ, जहाँ (शिवपुरीमा) यक्ष, गन्धर्व र किन्नरहरूद्वारा सुसेवित तिनीहरूलाई वर दिने शतरुद्रेश्वर महादेव रहनुभएको छ, त्यो नेपाल विराजमान छ॥३५-३९॥

जुन सुन्दर पहाडको शिखरमा किरातद्वारा सुसेवित भएर कार्तिकेयश्वर महादेव रहनुभएको छ त्यो नेपाल विराजमान छ। जहाँ भृगुतीर्थका गुफामा सुन्दरीहरूका साथ काकेश्वर महादेव रहनुभएको छ त्यो नेपाल विराजमान छ। जहाँ मणिपर्वतमाथि गन्धर्वद्वारा सेवित मणिचूडेश्वर भगवान् निरन्तर वास गर्नुहुन्छ त्यो नेपाल विराजमान छ॥४०-४२॥

---

१२. देव्या देवार्चितो नित्यं तन्नेपालो विभासते इति न.सं.पु.पाठः। १३. पाण्डकेशो महालिङ्गो देवैः सिद्धैः प्रसेवित इति न.सं.पु.पाठः।
१४. सहितो यत्र तन्नेपाल इति न.सं.पु.पाठः। १५. मणिपर्वतकोपरि इति न.सं.पु.पाठः।

योगेश्वरमहालिङ्ग[१६] यत्राऽऽस्ते प्रमथैः सह। योगिन्या योगदं नित्यं स नेपालो विराजते ॥४३॥
नारायणेश्वरो यत्र यक्षैः प्रसेवितोऽनिशम्। जलान्तरस्थितो गूढः स नेपालो विराजते ॥४४॥
ज्योतिर्लिङ्गेश्वरो यत्र योगतीर्थान्तिके सदा। देवैः प्रसेवितो नित्यं स नेपालो विराजते ॥४५॥
वागीश्वरो हि यत्राऽऽस्ते चित्रह्रदादधःस्थितः। ऋषिभिः सेवितो नित्यं स नेपालो विराजते।
कीलेश्वरमहालिङ्ग[१७] यत्राऽऽस्ते प्रमथैः समम्। गिरेस्तम्भो ह्यभूत्पूर्वं स नेपालो हि राजते ॥४६॥
वाल्मीकेशो हि यत्राऽऽस्ते लोकानां वरदोऽनिशम्। वीरभद्रमहातीर्थे स नेपालो विराजते ॥४७॥
मङ्गलेशो हि यत्राऽऽस्ते यत्रैव विमलेश्वरः। गणैः सार्द्धं सदाकालं स नेपालो विराजते ॥४८॥
अनन्तेशो हि यत्राऽऽस्ते ऋष्याश्रमान्तिके क्षितौ। सेवित[१८] ऋषिभिः सार्द्धं स नेपालो विराजते ॥४९॥
विश्वरूपेश्वरो यत्र स नेपालो हि भासते। सोमेश्वरः स्थितो यत्र स नेपालो विराजते ॥५०॥
गोभराटेश्वरो यत्र गुह्यकैः सेवितोऽनिशम्। भक्तानां वरदो नित्यं स नेपालो विराजते ॥५१॥
भृङ्गेश्वरो हि यत्राऽऽस्ते प्रमथैश्च समं सदा। देवैः प्रसेवितो नित्यं स नेपालो विराजते ॥५२॥
त्रिलिङ्गेश्वरो हि यत्राऽऽस्ते सरुद्रार्यागुहात्मकः। भक्तानां वरदो देवः स नेपालो हि भासते ॥५३॥
कुपितेशो हि यत्राऽऽस्ते कात्यायन्या समं सदा। लोकभीतिकरोऽत्यन्तं स नेपालो हि भासते ॥५४॥
सर्वेश्वरमहालिङ्ग[१९] यत्राऽऽस्ते प्रमथैः सह। लम्बोदरेण वै गौर्या स नेपालो हि भासते ॥५५॥
गोलोकेशमहालिङ्ग[२०] रुद्रतीर्थतटोत्तमे। विराजते सदाकालं स नेपालो हि राजते ॥५६॥

---

जहाँ योगको सिद्धि दिने योगेश्वर महालिङ्ग प्रमथगण, योगिनीका साथ सधैँ रहनुहुन्छ, त्यो नेपाल सुशोभित छ। जहाँ यक्षहरूले सुसेवित नारायणेश्वर महादेव जलभित्र लुकेर रहनुभएको छ, त्यो नेपाल विराजमान छ ॥४४॥ योगतीर्थका नजिकै देवताहरूद्वारा सुसेवित ज्योतिर्लिङ्गेश्वर भगवान् जहाँ सधैँ रहनुहुन्छ, त्यो नेपाल विराजमान छ। जहाँ चित्रह्रद नामका तलाउको तल्लो भागमा ऋषिहरूले सेवा गरिएका वागीश्वर महादेव रहनुभएको छ, त्यो नेपाल विराजमान छ। जहाँ प्रमथगणका साथ कीलेश्वर महालिङ्ग रहेको छ, जुन पर्वतमा स्तम्भ रूपमा आविर्भाव भएको थियो, त्यो नेपाल विराजमान छ ॥४३–४६॥

जुन वीरभद्र महातीर्थमा दुनियाँलाई वर दिने वाल्मीकेश्वर भगवान् सधैँ रहनुहुन्छ, त्यस्तो नेपाल अत्यन्त सुशोभित छ। जहाँ मङ्गलेश्वर भगवान् र विमलेश्वर भगवान् आफ्ना गणहरूका साथ सधैँ बस्नुहुन्छ, त्यो नेपाल विराजमान छ। जहाँ ऋषिहरूको आश्रमको नजिकै ऋषिद्वारा सेवित अनन्तेश्वर भगवान् ऋषिहरूका साथ बस्नुहुन्छ, त्यो नेपाल विराजमान छ। जहाँ विश्वरूपेश्वर भगवान् बस्नुभएको छ, त्यो नेपाल विराजमान छ। जहाँ सोमेश्वर भगवान् बस्नुभएको छ, त्यो नेपाल सुशोभित छ। जहाँ यक्षहरूद्वारा सेवित भक्तलाई वर दिने गोभराटेश्वर महादेव निरन्तर बस्नुहुन्छ, त्यो नेपाल विराजमान छ ॥४७–५२॥

जहाँ देवताहरूद्वारा सेवा गरिएका भृङ्गेश्वर महादेव प्रमथगणका साथ सधैँ बस्नुहुन्छ, त्यो नेपाल विराजमान छ। जहाँ कार्तिक स्वामीलाई लिएर बस्नुभएकी रुद्राणीका साथ भक्तलाई वर दिन त्रिलिङ्गेश्वर महादेव रहनुभएको छ, त्यो नेपाल विराजमान छ। जहाँ संसारलाई भय पैदा गर्ने कुपितेश्वर भगवान् कात्यायनीका साथ सधैँ रहनुहुन्छ, त्यो नेपाल अत्यन्त सुशोभित छ। जहाँ गणेशलाई लिएकी गौरीसँग सर्वेश्वर महालिङ्ग प्रमथगणहरूले सहित भएर रहनुभएको छ, त्यो नेपाल विराजमान छ ॥५३–५६॥

---

१६. योगेश्वरो महालिङ्ग इति न.सं.पु.पाठः।
१७. कीलेश्वरो महालिङ्ग इति न.सं.पु.पाठः।
१८. सेवित इति न.सं.पु.पाठः।
१९. सर्वेश्वरो महालिङ्ग इति न.सं.पु.पाठः।
२०. गोलोकेशो महालिङ्ग इति न.सं.पु.पाठः।

सच्चन्दनभराटेशो भासते प्रमथैः सह। चन्दनाद्रिनितम्बे हि देवासुरेप्सितप्रदः ॥५७॥
यक्षेश्वरो हि यत्राऽऽस्ते यक्षलोकस्पृहाप्रदः। यक्षतीर्थान्तिके शश्वदुशीरबीजशेखरे ॥५८॥
चण्डिकेशमहादेव[२१] सदा चण्डिकया समम्। यत्र विराजते देवो विष्णुपद्यास्तटे शुभे ॥५९॥
धर्मेश्वरमहालिङ्गं धर्मेणाऽऽराधितं सदा[२२]। पाशुपते महाक्षेत्रे स नेपालो विराजते ॥६०॥
गोकर्णेशमहालिङ्गं[२३] चन्द्रभागातटोत्तमे। राजते पितृभिर्नित्यं देवर्षिभिः प्रसेवितम् ॥६१॥
कोटीश्वरो गणैः सार्द्धं रुद्रधारातटे बभौ। यत्र शङ्खस्तपस्तेपे रक्षोवर्गफलप्रदः ॥६२॥
बाणेश्वरो बभौ यत्र क्षेत्रे पाशुपतोत्तमे। ज्ञानेश्वरमहालिङ्गं[२४] नन्दीसारोत्तमे शुभे ॥६३॥
पाशुपते महाक्षेत्रे शैलेश्वरो विराजते। हिमवताऽनिशं भक्त्या मुदेप्सया प्रसेवितः ॥६४॥
जलप्रवाहसाम्मुख्ये वाग्वत्या[२५] राजतेऽनिशम्। जलेश्वरमहालिङ्गं[२६] रुद्रेण स्थापितं स्वयम् ॥६५॥
गुह्येश्वरमहालिङ्गं[२७] सर्वलोकेप्सितप्रदम्। राजते प्रमथैः सार्धं स नेपालो हि राजते ॥६६॥
किरातेशो हि यत्राऽऽस्ते वाग्वत्याः पूर्वतस्तटे। सिद्धाचले महारण्ये स नेपालो विराजते ॥६७॥
ज्योतिरूपेश्वरो यत्र पशुरूपाश्रिते शिवे। भस्मभिर्धूलिभिः स्नातो भस्मेश्वरो विराजते ॥६८॥
धन्यं पाशुपतं क्षेत्रं राजते भुवनेश्वरः। यत्राऽऽस्ते प्रमथैः सार्द्धं स रुद्रमन्दिरेश्वरः ॥६९॥
यत्र विभासतेऽजस्रं प्रदीपैर्मन्दिरेश्वरः। भ्राजन्ते यत्र लिङ्गानि स्थापितानि च निर्जरैः ॥७०॥

---

जहाँ रुद्रतीर्थको उत्तम तटमा गोलोकेश्वर महालिङ्ग सधैँ विराजमान हुनुहुन्छ, त्यस्तो नेपाल सुशोभित छ। त्यसै देशमा चन्दन पर्वतको तल्लो भागमा देवता र राक्ससको इच्छा पूर्ण गरिदिने सच्चन्दनभराटेश्वर महादेव प्रमथगणहरूका साथ विराजमान हुनुभएको छ। त्यहाँ यक्षतीर्थको नजिकै उशीरबीज पर्वतको टुकुरामा यक्षहरूलाई वाञ्छित फल दिने यक्षेश्वर महादेव रहनुभएको छ। त्यसै देशमा विष्णुपदी नदीको कल्याणमय तटमा चण्डिकेश्वर महादेवको लिङ्ग चण्डिकाका साथ सधैँ विराजमान हुन्छ। पाशुपत महाक्षेत्रमा धर्मद्वारा सेवित महालिङ्ग रूप शिव रहनुभएको छ, त्यो नेपाल सुशोभित छ ॥५७–६१॥

चन्द्रभागा नदीको उत्तम तटमा पितृहरू र देवर्षिहरूले सधैँ सेवा गरिएका भगवान् गोकर्णेश्वर महालिङ्गका रूपमा विराजमान हुनुहुन्छ। रुद्रधारा नदीको तटमा चारै पुरुषार्थको फल दिने कोटेश्वर भगवान् आफ्ना गणहरूका साथ रहनुभएको छ। कुनै समयमा त्यहाँ आएर शङ्खासुरले तपस्या गरेको थियो। उत्तम पाशुपतक्षेत्रमा बाणेश्वर भगवान् विराजमान हुनुभएको छ। त्यस्तै नन्दीसार भन्ने उत्तम शिवक्षेत्रमा ज्ञानेश्वरको महालिङ्ग छ ॥६२–६४॥

उत्तम पाशुपतक्षेत्रमा हिमालयको भक्ति, प्रीति र इच्छाले सधैँ सुसेवित शैलेश्वर महादेव विराजमान हुनुभएको छ। वाग्मतीको प्रवाहमा स्वयम् रुद्रले स्थापना गर्नुभएको जलेश्वरको महालिङ्ग सधैँ विराजमान भएर रहेको छ। सम्पूर्ण प्राणीहरूको इच्छा पूर्ण गर्ने गुह्येश्वर महालिङ्ग प्रमथ आदि गणका साथ सुशोभित छ, त्यो नेपाल विराजमान छ। जहाँ वाग्मतीको पूर्वपट्टि सिद्धाचलको जङ्गलमा किरातेश्वर महादेव हुनुहुन्छ, त्यो नेपाल विराजमान छ। जहाँ शिवजी पशुरूप लिएर बस्नुभएको थियो, त्यस स्थलमा ज्योतिरूपेश्वर भगवान् हुनुहुन्छ, भस्म र धूलाले स्नान गर्ने भस्मेश्वर भगवान् पनि त्यहीँ हुनुहुन्छ। जहाँ भुवनका मालिक रुद्रमन्दिरेश्वर भगवान् प्रमथगणहरूका साथ विराजमान हुनुभएको छ, त्यस्तो पाशुपतक्षेत्र धन्य छ ॥६५–७०॥

---

२१. चण्डिकेशो महालिङ्ग इति न.सं.पु.पाठः।
२२. धर्मेश्वरो महालिङ्गो धर्मेणाराधितोऽनिशम् इति न.सं.पु.पाठः।
२३. गोकर्णेशो महालिङ्ग इति न.सं.पु.पाठः।
२४. ज्ञानेश्वरो महालिङ्ग इति न.सं.पु.पाठः।
२५. अभिप्रवाहे वाग्वत्या जीवने इति न.सं.पु.पाठः।
२६. जलेश्वरो महालिङ्ग इति न.सं.पु.पाठः।
२७. गुह्येश्वरो महालिङ्ग इति न.सं.पु.पाठः।

स्थापितानि च दिक्पालैस्तदीप्सितप्रदानि च। नवलिङ्गानि राजन्ते स्थापितानि ग्रहैस्तथा ॥७१॥
सिद्धेश्वरमहालिङ्गं काङ्क्षासिद्धिफलप्रदम्। पशुपतीश्वराख्यातं ज्योतिर्लिङ्गंद्द विराजते ॥७२॥
सुरगणैः समं शश्वत् स नेपालो विराजते। क्षेत्रैर्लिङ्गैः[२९] समायुक्तञ्चान्यैर्देवैश्च पीठकैः ॥७३॥
विराजते सदाकालं स्वर्गमोक्षफलप्रदम्। धन्यं नैपालकं क्षेत्रं लोके कामवरप्रदम् ॥७४॥
राजन्ते यत्र लिङ्गानि कोटीनाञ्च प्रमाणतः। पुण्यं नैपालकं क्षेत्रं नानातीर्थसमाकुलम् ॥७५॥
पापापहारदक्षाभिः[३०] तटिनीभिर्विराजते। यावन्तो प्राणिनः[३१] सन्ति क्षेत्रे नेपालपावने ॥७६॥
सेव्यात्मानो हि तावन्तः पशवः पक्षिणोऽपि वा। प्राणत्यागं करिष्यन्ति येऽज्ञानादपि प्राणिनः[३२] ॥७७॥
महापद्मदले तत्र स्वर्गं यान्ति न संशयः। धन्यं पाशुपतं क्षेत्रं महापुण्यतरं वरम् ॥७८॥
साक्षात्पशुपतेर्लिङ्गं यत्र विराजते शुभम्[३३]। ज्ञानयोगेन यो मर्त्यस्तत्र मुञ्चति विग्रहम् ॥७९॥
इह लोकं परित्यज्य शिवलोकं स गच्छति। कार्त्तिके मधुमासे वा स्थाने स्थाने समाव्रजन् ॥८०॥
तेषु तेषु च तीर्थेषु स्नात्वा स्नात्वा सुभक्तितः। अर्चयन्ति च लिङ्गानि नेपालसम्भवानि च ॥८१॥
सकृदेवं कृतस्याऽर्य तस्य पुण्यफलं शृणु।

---

त्यहाँ ज्योतिस्वरूप भएर मन्दिरेश्वर भगवान् विराजित हुनुभएको छ, जहाँ देवताहरूले स्थापना गरेका लिङ्गहरू सुशोभित छन्। त्यस ठाउँमा इच्छा पूर्ण गरिदिने दिक्पाल र ग्रहहरूद्वारा स्थापित नौवटा लिङ्गहरू छन्। इच्छा सिद्धि गर्ने सिद्धेश्वर महालिङ्ग र पशुपतीश्वर ज्योतिर्लिङ्ग, देवताहरू, क्षेत्र, अन्य देवता तथा लिङ्गहरू र पीठहरूका साथ जहाँ विराजमान हुनुहुन्छ, त्यो नेपाल अत्यन्त सुशोभित छ। सधैं स्वर्ग तथा मोक्ष दिने, इच्छा लागेको फल दिने सुशोभित नेपालको क्षेत्र धन्य छ। जहाँ करोडौं लिङ्गहरू छन्, विभिन्न किसिमका तीर्थहरूले युक्त भएको छ, त्यस्तो नेपालको क्षेत्र पुण्यदायक छ ॥७१-७६॥

विभिन्न किसिमका पापलाई हरण गर्ने नदीहरूले गर्दा त्यो क्षेत्र विराजमान भएको छ। यहाँका जति पनि प्राणीहरू छन्, ती चाहे पशुरूपमा होऊन् या पक्षीरूपमा, ती सबै सेवा गर्न योग्य छन्। महापद्म आकार भएको त्यस नेपाल क्षेत्रमा नजानीकन पनि जसले प्राण त्याग गर्छन्, ती व्यक्ति स्वर्गमा जान्छन्, यसमा सन्देह छैन। अत्यन्त पुण्यक्षेत्र यो नेपाल धन्य छ ॥७७-७९॥

जहाँ साक्षात् पशुपतिनाथको लिङ्ग विराजमान छ, जुन मानिस ज्ञानयोगले त्यस पशुपतिको क्षेत्रमा शरीर त्याग गर्छ, त्यो मानिस यो लोक छोडेर शिवलोकमा जान्छ। कार्तिकमा होस् वा चैत्रमा होस्, ठाउँ-ठाउँमा गएर ती-ती तीर्थहरूमा भक्तिपूर्वक स्नान गरी नेपालमा भएका लिङ्गहरूको एकपटक मात्र भए पनि दर्शन गर्दा जुन फल प्राप्त हुन्छ, त्यो सुन्नुहोस् ॥८०-८१½॥

---

२८. पशुपतीश्वरो यत्र ज्योतिर्लिङ्ग इति न.सं.पु.पाठः।
२९. क्षेत्रलिङ्गादिभिः, इति न.सं.पु.पाठः।
३०. नानापापहृताभिश्च इति न.सं.पु.पाठः।
३१. जीविन इति न.सं.पु.पाठः।
३२. जीविन इति न.सं.पु.पाठः।
३३. विराजते हि यत्र च इति न.सं.पु.पाठः।

पृथ्वीस्थानां गवां दानात् विप्रेभ्यो यत् फलं भवेत्[३४] । पृथ्वीस्थदेवमूर्तीनां दर्शनात् यत् फलं भवेत् ॥८२॥
सर्वां हि मेदिनीं दत्त्वा सशैलवनकाननाम् ॥८३॥
तावत्कोटिगुणं देवपूजनात् यत्फलं भुवि । शतक्रत्वादियज्ञानामर्चनानां तथैव च ॥८४॥
यावन्ति सन्ति[३५] पुण्यानि कोटिकोटिगुणानि च । सार्धत्रिकोटितीर्थेषु स्नानात् दानात् तपस्यया ॥८५॥
यावन्ति सन्ति पुण्यानि तेषां कोटिगुणानि च । तत्फलानां सुखं धीर प्राप्नोति च न संशयः ॥८६॥
प्रयुक्तोऽपि महापापैः सर्वपापानि मोचयन् । अयुतार्काभयानस्थः परिवारैः समन्वितः ॥८७॥
कुलकोटिं समुद्धृत्य रुद्रलोकं स गच्छति । न पुनर्जायते योनौ मरणं नास्ति तस्य च ॥८८॥
सेवमानः[३६] सदा रुद्रं यावच्चन्द्ररवी वसेत् । महोल्लासो सदानन्दो निर्विकारो महाशिवम्[३७] ॥८९॥
महत्सुखं भजेत्तत्र सर्वदेवनमस्कृतम्[३८] ।
ये यत्र कुत्रापि च जन्तवः स्युः[३९] ज्ञानैश्च धर्मैरपि वर्जितास्ते[४०] ।
नैपालकेऽङ्गानि परि[४१]त्यजन्ति शैवं महाधाम सुखेन यान्ति[४२] ॥९०॥
पिबन्ति कर्णप्रपुटैः सुभक्ता अध्यायमेनं सुधया प्रपूर्णम्[४३] ।
आयुर्यशः कीर्त्तिमलौकिकीन्ते[४४] पुत्रं विपङ्काः द्रविणं लभन्ते[४५] ॥९१॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्यं नाम सप्ततिमोऽध्यायः ॥७०॥

---

वन–जङ्गलले युक्त भएको सम्पूर्ण पृथ्वी दान गर्दा जुन फल मिल्छ, पृथ्वीमा जति गाई छन्, ती सबै ब्राह्मणलाई दान दिँदा जुन पुण्य मिल्छ, पृथ्वीमा जति पनि देवताका मूर्ति छन्, ती सबैको दर्शन गर्नाले जुन पुण्य मिल्छ, नेपालमा भगवान् पशुपतिको एकपटक पूजा गर्नाले त्योभन्दा करोडौं गुणा बढी फल मिल्छ । शतक्रतु आदि यज्ञ तथा पूजा गर्नाले जति पुण्यफल प्राप्त हुन्छ, साढे तीन करोड महातीर्थमा घुम्दा जति पुण्य उपलब्ध हुन्छ, ती लिङ्गहरूको एकपटक पूजा गर्दा तिनको भन्दा करोडौं गुणा बढी पुण्य मानिसले पाउँछ, यसमा सन्देह छैन ॥८२–८७॥

महापापी पनि सबै पापबाट मुक्त भएर सूर्यजस्तो चम्कने विमानमा बसी सबै आफ्ना परिवारका साथ करोडौं कुलको उद्धार गर्दै रुद्रलोकमा जान्छ । फेरि कुनै योनिमा जन्मँदैन र मर्दैन पनि । साथै जहाँसम्म सूर्य र चन्द्रमा रहन्छन्, त्यहाँसम्म सबै देवताले नमस्कार गरिएका महाशिव रुद्र भगवान्को सेवा गर्दै अत्यन्त आनन्द, उल्लास र निर्विकार भएर सुखको भोग गर्न पाउनेछ ॥८८–८९½॥

जो कोही ठाउँमा जन्मेका र धर्म नभएका व्यक्तिहरू पनि यदि नेपालमा आएर शरीर त्याग गर्छन् भने तिनीहरू अवश्य पनि शैवपदमा पुग्छन् । जुन भक्तले यस अध्यायको अमृतरस कर्णपुटद्वारा पान गर्छन्, तिनीहरूले पापमुक्त भएर अनुपम आयु, यश, कीर्ति, धन र पुत्र पाउनेछन् ॥९०–९२॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा नेपालमाहात्म्यनामक सत्तरिऔं अध्याय पूरा भयो ।

---

३४. देवानां प्रतिमा मह्यां यावन्तः सन्ति दर्शनात्, इति न.सं.पु.पाठः
३५. यावत्सन्ति च इति न.सं.पु.पाठः ।
३६. सेवयँश्च इति न.सं.पु.पाठः ।
३७. महोल्लासे सदानन्दे निर्विकारे महाशिवे इति न.सं.पु.पाठः ।
३८. वसेत्तत्र सर्वदेवनमस्कृते इति न.सं.पु.पाठः ।
३९. च जन्तवो हि इति न.सं.पु.पाठः ।
४०. वर्जिता वै इति न.सं.पु.पाठः ।
४१. कथाः इति न.सं.पु.पाठः ।
४२. शैवं प्रगच्छन्ति जनाः सुखं ते इति न.सं.पु.पाठः ।
४३. ये चैतदध्यायसुधारसं वै इति न.सं.पु.पाठः ।
४४. कीर्तिमनूपमं ते इति न.सं.पु.पाठः ।
४५. प्राप्स्यन्ति पुत्रञ्च धनं विपङ्काः इति न.सं.पु.पाठः ।

# एकसप्ततितमोऽध्यायः

## पाशुपतक्षेत्रस्य महिमा

### स्कन्द उवाच

शृणु कुम्भज वक्ष्यामि क्षेत्रं महत्फलप्रदम्। देवैः प्रकाङ्क्षितं नित्यं भुक्तिमुक्तीप्सितप्रदम् ॥१॥
मृगेन्द्रशिखरे संस्थात्[1] कूटेश्वराच्च याम्यतः। आतिलेश्वरपर्यन्तं ज्ञेया सा कामदा क्षितिः[2] ॥२॥
विकटेशान्महल्लिङ्गात्पूर्वदिशाद्धि वारुणम्। आचन्दनभराटान्तं ज्ञेयं क्षेत्रोत्तमोत्तमम् ॥३॥
योगाधारा नदी श्रेष्ठा तस्याश्चैशान्यतः पुनः। आविष्णुतीर्थपर्यन्तं ज्ञेयं मोक्षप्रदायकम् ॥४॥
गोदावरीमहातीर्थादाग्नेयाद्धि घटोद्भव। आहरितीर्थपर्यन्तं पवित्रं सर्वतोदिशम् ॥५॥
तेषां मध्ये च नेपालक्षेत्रं पाशुपतं परम्। भुक्तिर्मुक्तिः सुखं भूमिः प्राप्यते तत्र प्राणिभिः ॥६॥
योजनाभ्यन्तरं क्षेत्रं प्रशस्तं सर्वतोदिशम्। मूलक्षेत्रं तु विज्ञेयं रुद्रेणाराधितं सदा ॥७॥
मध्ये पशुपतिर्देवो ज्योतीरूपो[3] विराजते। गुप्ताख्यया समं देव्या प्रमथैर्योगिनीगणैः ॥८॥
उमामहेश्वरं क्षेत्रं प्रशस्तं सार्वकामिकम्। नेपालस्य क्षितेर्मध्ये जानीयाद् भुक्तिमुक्तिदम् ॥९॥
वज्राख्या योगिनी देवी पशुपतिर्महेश्वरः। तयोर्मध्ये परं ज्ञेयं योगक्षेत्रञ्च सिद्धिदम् ॥१०॥
यद् यदिच्छन्ति लोकास्तत् तल्लभन्ते ह्युपासनात्[4]। योगाभ्यासाच्च तत्सिद्धिं लभन्ते योगिनो ध्रुवम् ॥११॥
विष्णोः पशुपतेर्मध्ये क्षेत्रं हरिहरात्मकम्। द्वाभ्यां विराजते[5] यत्र वृषेण गरुडेन च ॥१२॥
यत्किञ्चित्क्रियते तत्र शुभकर्म नरैर्मुनि। तत्सर्वमक्षयं लब्ध्वा ते भवन्त्यूर्ध्वगामिनः[6] ॥१३॥

---

## अध्याय – ७१

### पाशुपतक्षेत्रको महिमा

कातिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! सुन्नुहोस्, देवताहरूले पनि चाहना गरेको, सधैं भुक्ति, मुक्ति तथा ठूलो फल दिने क्षेत्रको बारेमा म बताउँछु। मृगेन्द्रपर्वतको शिखरमा विराजमान कोटेश्वरदेखि दक्षिणपट्टि तिलेश्वर पर्वतसम्म रहेको जुन भू–भाग छ, त्यसलाई कामदा भूमि भनेर जान्नुहोस्। विकटेश्वर महालिङ्गदेखि पूर्व र त्यसै पर्वतदेखि पश्चिमपट्टि चन्दनभराटेश्वरसम्मको जुन भूभाग छ, त्यसलाई उत्तमोत्तम क्षेत्र भनेर जान्नुहोस्। श्रेष्ठ योगधारा नदी र तिनको ईशानतर्फको विष्णुतीर्थसम्मको क्षेत्रलाई मोक्ष दिने क्षेत्र भनेर जान्नुहोस् ॥१–४॥

हे अगस्त्य मुनि ! आग्नेय दिशाको गोदावरी महातीर्थदेखि हरितीर्थसम्मको क्षेत्र सबैतिर पवित्र मानिएको छ। तिनीहरूको माझमा नेपालको उत्तम पाशुपतक्षेत्र छ, त्यहाँ प्राणीहरूले भुक्ति, सुख, भूमि र मुक्ति सजिलैसित पाउँछन्। एक योजनभित्रको क्षेत्र सबै दिशामा प्रशंसनीय छ। यो भगवान् रुद्रले सेवा गर्नुभएको क्षेत्र हो भनेर जान्नुहोस्। मध्यक्षेत्रमा गुप्ता नाम गरेकी देवी, प्रमथगण र योगिनी गणलाई राखेर ज्योतिर्लिङ्गस्वरूप भएका पशुपतिनाथ विराजमान हुनुहुन्छ ॥५–८॥

नेपालभूमिको माझमा सम्पूर्ण कामना पूर्ण गर्ने भुक्ति र मुक्तिदाता अति उत्तम उमामहेश्वरको क्षेत्र छ। वज्रयोगिनी देवी र भगवान् पशुपतिनाथका माझको क्षेत्र सिद्धि दिने उत्तम योगक्षेत्र हो। त्यहाँ दुनियाँले जुन–जुन कामना लिएर उपासना गर्छन्, त्यो त्यो फल पाउँछन्, योगीहरूले योगाभ्यास गरे भने त्यसको सिद्धि उनीहरूलाई प्राप्त हुन्छ। विष्णु र पशुपतिका बीचको क्षेत्र हरिहर क्षेत्र हो। त्यहाँ साँढे र गरुडका साथ शिव र विष्णु विराजमान हुनुभएको छ। हे मुनि ! त्यस क्षेत्रमा मानिसले राम्रा–नराम्रा जे–जस्ता काम गर्छन्, ती सबै अक्षय हुन्छन्, त्यस्तो फल प्राप्त गरेर मानिसहरू राम्रो कामबाट अत्यन्त माथिल्लो र नराम्रो कामबाट अत्यन्त तलको स्थान प्राप्त गर्छन् ॥९–१३॥

---

१. संस्थ इति न.सं.पु.पाठः।
२. ज्ञेयं तत्कामदं क्षितिम् इति न.सं.पु.पाठः।
३. ज्योर्तिलिङ्ग इति न.सं.पु.पाठः।
४. यं यं कामन्ति लोकास्तं तं प्राप्नुवन्ति ह्युपासनात् इति न.सं.पु.पाठः।
५. ततविराजेते हि तौ, इति न.सं.पु.पाठः।
६. तत्सर्वमक्षयं लब्ध्वा गमिष्यन्त्यूर्ध्वतारकौ, इति न.सं.पु.पाठः।

जायन्ते च म्रियन्ते वा क्षेत्रे पाशुपते वरे। ब्रह्मादिलोकभोक्तारः शिवेन सह मोदिनः ॥१४॥
धन्यं पाशुपतं क्षेत्रं भुक्तिमुक्तिप्रदं सदा। दिविस्था यत्र पश्यन्ति सर्वान् माहेश्वरान् गणान् ॥१५॥
तेपे विष्णुर्भृशं यत्र लक्ष्मीप्सया च शाङ्करे। अब्दान्ते लक्ष्मीवान् देवः सिद्धक्षेत्रप्रभावतः ॥१६॥
कृतानि त्रीणि कुण्डानि ब्रह्मणात्र तपस्विना। योगेनैव पवित्राणि लोकोद्धरणहेतुना ॥१७॥
कश्यपोऽपि तपस्तेपे शिवाराधनतत्परः। दक्षः प्रजापतिः श्रेष्ठो मार्कण्डेयो महामुनिः ॥१८॥
अश्वत्थामा बलिर्व्यासो हनूमाँश्च कृपस्तथा। रामो बिभीषणो रक्षस्तेपिरे दीर्घजीवनाः ॥१९॥
धन्यं पाशुपतं क्षेत्रं सर्वक्षेत्रोत्तमोत्तमम्। विराजते समं तीर्थैः भुक्तिमुक्तीप्सितप्रदैः ॥२०॥
मरीचिरङ्गिराश्चैव प्रह्लादः पुलदः ऋतुः। भृगुरत्रिर्महेशानं यत्राऽर्चन्ति दिने दिने[७] ॥२१॥
नित्यं विराजते लिङ्गैस्तत्क्षेत्रमष्टमूर्त्तिभिः। सर्वलोकार्हणैः शश्वत्तेषां हृद्वाञ्छितप्रदम् ॥२२॥
श्लेष्मान्तकवनं यत्र विराजते सदा वरम्। पशुपतेः प्रसादाद्धि नागकलेवरोद्भवम् ॥२३॥
गोपदं राजते तत्र नित्यं सिद्धगणैः समम्। निरञ्जनस्य दत्तस्य योगसिद्धं बलप्रदम् ॥२४॥
तत्र विनायकोऽजस्रं क्षेत्रपालस्तथापरः। विराजेते भृशं तौ हि देवीक्षेत्रस्य रक्षकौ[८] ॥२५॥
तत्राऽसौ राजते देवी योगिनीनाञ्च कोटिभिः[९]। गुह्येशी सर्वकालेषु सिद्धैः देवैः प्रसेविता[१०] ॥२६॥
ब्राह्मी स्थिता योगिनी च कोटिकोटिगणैर्वृता[११]। गुह्येश्वर्यन्तिके शश्वत्तत्क्षेत्रं प्रविराजते ॥२७॥
माहेश्वरी स्थिता यत्र योगिनीकोटिसेविता। तदन्तिके सदाकालं तत्क्षेत्रं शोभते[१२] भृशम् ॥२८॥

---

ब्रह्मलोक आदि उत्तम लोकका भोक्ताहरू नै यस पाशुपतक्षेत्रमा जन्मन्छन् र शिवका साथ आनन्दपूर्वक बस्छन्। स्वर्गमा रहेका देवताहरूले पनि सबै शिवजीका गणहरूलाई जहाँ देख्छन्, त्यस्तो सधैँ भुक्ति र मुक्ति दिने पाशुपतक्षेत्र धन्य छ ॥१४-१५॥

यही शैवक्षेत्रमा लक्ष्मीलाई प्राप्त गर्न विष्णुले तपस्या गर्नुभयो, एक वर्ष बितेपछि सिद्धिक्षेत्रको प्रभावले गर्दा विष्णुले लक्ष्मीको साथ पाउनुभयो। यहाँ लोकको उद्धारका लागि तपस्वी ब्रह्माले योगद्वारा तीनवटा पवित्र कुण्ड बनाउनुभएको छ ॥१७॥ यहाँ कश्यप ऋषिले शिवजीको पूजा तत्पर भएर तपस्या गरे। त्यस्तै दक्षप्रजापति, मार्कण्डेय नाम गरेका महामुनि, अश्वत्थामा, बलि, व्यास, हनुमान्, कृपाचार्य, राम र राक्षस विभीषण यी चिरञ्जीवीहरूले पनि तपस्या गरे ॥१८-१९॥

पाशुपतक्षेत्र सबै क्षेत्रभन्दा धन्य र उत्तम क्षेत्र हो। भुक्ति, मुक्ति र इच्छा लागेको फल दिने तीर्थका साथ यो क्षेत्र विराजमान छ। जहाँ मरीचि, अङ्गिरा, प्रह्लाद, पुलह, ऋतु, भृगु र अत्रिले सधैँ भगवान् महेश्वरको पूजा गर्छन्, दुनियाँको इच्छालाई पूर्ण गर्ने भगवान् पशुपति आठै मूर्तिका लिङ्गस्वरूप भएर यस क्षेत्रमा सधैँ विराजमान हुनुभएको छ। त्यहाँ पशुपतिका अनुग्रहले गर्दा नागको शरीरबाट पैदा भएको श्रेष्ठ श्लेष्मान्तक वन विराजमान भएको छ। त्यहाँ सिद्ध गणका साथ निरञ्जन दत्तात्रेय भगवान्‌को योगद्वारा सिद्ध भएको बल प्रदान गर्ने गोपदतीर्थ विराजमान छ। त्यहाँ विनायक र क्षेत्रपाल भगवती गुह्येश्वरी देवीका क्षेत्रको जोडतोडका साथ रक्षा गर्दै बसिरहेका हुन्छन्। त्यसै ठाउँमा कोटिकोटि सिद्धदेवहरूले सधैँ सेवा गरिएकी गुह्यकाली योगिनी विराजमान हुनुभएको छ। त्यहाँ गुह्येश्वरीको नजिकै करोडौँ गणले युक्त भएकी ब्राह्मी सधैँ विराजमान हुनुहुन्छ। त्यस क्षेत्रमा गुह्येश्वरीको नजिकै करोडौँ गणले सुसेवित माहेश्वरी रहनुभएको छ। त्यसैले त्यो क्षेत्र अत्यन्त शोभायमान छ ॥२०-२८॥

---

७. यत्र सन्ति समर्हयन् इति न.सं.पु.पाठः।
८. समासते भृशं तौ हि देव्याः क्षेत्रं प्ररक्षयन् इति न.सं.पु.पाठः।
९. योगिनी कोटिकोटिभि इति न.सं.पु.पाठः।
१०. गुह्याख्या सर्वकाले वै सिद्धदेवैः प्रसेविता इति न.सं.पु.पाठः।
११. यत्र कोटिगणैश्च संवृता इति न.सं.पु.पाठः।
१२. शुशुभे इति न.सं.पु.पाठः।

कौमारी संस्थिता तत्र योगिनीकोटिसंस्थिता। देव्याः स्थाने सदाकालं तत्क्षेत्रं हि विराजते ॥२९॥
वाराही संस्थिता तत्र गणकोटिसुसंवृता। देव्याः सदाऽन्तिके भव्ये तत्क्षेत्रं हि प्रभासते ॥३०॥
नारसिंही स्थिता तत्र गणकोटिसमावृता। सुविदूरे सदा देव्यास्तत्क्षेत्रं किल भासते ॥३१॥
शिवदूती स्थिता तत्र गणकोटिप्रसेविता। समीपे सततं देव्यास्तत्क्षेत्रमभिभासते ॥३२॥
दशदिक्षुः सदा देव्याः स्थानं रक्षन्ति श्रद्धया[१३]। स्वं स्वं वाहनमारूढाः कोटिकोटिगणैर्वृताः ॥३३॥
याम्ये द्वारे स्थिता देव्यो विराजन्ते त्वहर्निशम्। पशुपतेर्गणैः सार्द्धं तत्क्षेत्रं रक्षयन् सदा ॥३४॥
सिद्धो गणपतिर्तत्र द्वारदेशे विराजते। परिवारैः समं नित्यं तद्द्वारं पालयन्[१४] सदा ॥३५॥
क्षेत्रपालोऽमरो नित्यं तत्क्षेत्रं रक्षयन् सदा। मनोवाञ्छाकरो नृणां सदाकालं विराजते ॥३६॥
तत्रैव वत्सला देवी विराजते गणैः समम्। भुक्तिमुक्तिप्रदा नित्यं सत्या वक्षस्थलोद्भवा ॥३७॥
तत्रैव मङ्गला देवी भक्तानां मङ्गलप्रदा। भक्तेभ्यो मङ्गलं दत्त्वा पाशुपते विराजते ॥३८॥
राजराजेश्वरी देवी सर्ववाञ्छाफलप्रदा। सगणा संस्थिता तत्र पाशुपते हि राजते ॥३९॥
कुण्डं विराजते तत्र भविष्यसूचकं सदा। तज्जले जन्मिनां[१५] नृणां प्रतिबिम्बप्रदर्शनात् ॥४०॥
ब्रह्मणा निर्मितं पूर्वं नृणां ज्ञानप्रबुद्धये। भविष्यं प्रेक्ष्य धीमन्तो इतिष्यन्तोऽङ्गमुक्तये[१६] ॥४१॥
चन्द्रः पितामहो तत्र सर्वभूतदयापरः। शर्वध्यानरतो नित्यं पाशुपते विराजते ॥४२॥
भैरवः स विरूपाक्षः सर्वगणैः समं सदा। तत्र विराजतेऽजस्रं तत्क्षेत्रं रक्षयन्मुदा ॥४३॥
अनन्तो राजते तत्र परिवारैः समं सदा। तत्क्षेत्रं रक्षयन् भक्त्या सर्वलोकप्रवन्दितः ॥४४॥

---

गुह्येश्वरीको स्थान नजिकैको त्यस क्षेत्रमा करोडौं गणले युक्त भएकी कौमारी योगिनी रहनुभएको छ, त्यसैले यो क्षेत्र अत्यन्त शोभायमान बनेको छ। यसै गरी त्यस क्षेत्रमा कोटिगणद्वारा सुहाएकी भगवती वाराही ओजस्विनी गुह्येश्वरीको सान्निध्यमा विराजमान हुनुहुन्छ। यसो भएकाले पनि यो क्षेत्र सुशोभित बनेको छ। त्यसैको निकटमा करोडौं गणले युक्त भएर नारसिंही रहनुभएको छ। त्यसैले त्यो क्षेत्र अत्यन्त सुन्दर बनेको छ ॥२९–३१॥

गुह्येश्वरी देवीको नजिकै करोडौं गणले सेवित भएकी शिवदूती नाम गरेकी देवी सधैं रहनुहुन्छ, त्यसैले त्यो क्षेत्र अत्यन्त सुशोभित छ। यसरी त्यहाँ रहेका मातृका देवीहरूले आफ्नो–आफ्नो वाहनमा चढेर करोडौं गणले युक्त हुँदै यहाँका दशै दिशाका स्थानहरूको रक्षा गरिरहेका छन्। गुह्येश्वरीको दक्षिणद्वारमा रहेका गणहरू पशुपतिका गणहरूसित मिलेर त्यस क्षेत्रको रक्षा गर्दै रातदिन सुहाएका छन्। गुह्येश्वरीको द्वारमा द्वारपाल बनेर आफ्ना परिवारका साथ सिद्धगणेश विराजमान हुनुभएको छ। मनुष्यको इच्छा पूर्ण गर्ने देवता, क्षेत्रपाल अमर भएर त्यस क्षेत्रको रक्षा गर्दै सधैं त्यहाँ बसेका छन् ॥३२–३६॥

सतीको छातीबाट उत्पन्न भएकी, सधैं भुक्ति र मुक्ति दिने वत्सला नाम गरेकी देवी त्यहाँ नै विराजमान हुनुहुन्छ। त्यसै पाशुपतक्षेत्रमा भक्तहरूलाई कल्याण गर्ने र मङ्गल दिने मङ्गलादेवी सधैं विराजमान हुनुहुन्छ। त्यसै पाशुपतक्षेत्रमा सम्पूर्ण इच्छा अनुसारको फल दिने राजराजेश्वरी देवी आफ्ना गणहरू सहित रहनुभएको छ। त्यही जलमा प्रतिबिम्ब हेरेर भविष्यको सूचना गर्ने कुण्ड छ। मानिसहरू त्यस कुण्डको जलमा आफ्नो प्रतिबिम्ब हेरेर भविष्य थाहा पाउँछन्। बुद्धिमान्हरूले भविष्य हेरेर आफ्नो शरीरको मुक्तिका लागि प्रयास गरून् भन्ने ठानेर मानिसहरूको ज्ञानलाई बढाउन अघि ब्रह्माजीले यो कुण्ड बनाउनुभएको हो ॥३७–४१॥

सबै प्राणीहरूमा दया गर्ने सम्पूर्ण ध्यानमा तत्पर हुनुभएका पितामह चन्द्र पनि सधैं त्यस पाशुपतक्षेत्रमा विराजमान हुनुहुन्छ। विरूपाक्ष नाम गरेका भैरव पनि सम्पूर्ण गणहरूका साथै त्यो क्षेत्रको रक्षा गर्दै आनन्दसित त्यहाँ विराजमान हुनुभएको छ। भक्तिपूर्वक सबैले नमस्कार गरिएका अनन्त पनि आफ्ना परिवारहरूका साथ त्यस क्षेत्रको रक्षा गर्दै त्यहाँ रहनुभएको छ ॥४२–४४॥

---

१३. एवं दशदिशो देव्यः स्थानं रक्षन्ति सर्वदा इति न.सं.पु.पाठः।
१४. तद्वारं रक्षयन् इति न.सं.पु.पाठः।
१५. जन्मिने इति न.सं.पु.पाठः।
१६. इतिष्यन्त्यङ्गमुक्तये इति न.सं.पु.पाठः।

पश्चिमे द्वारि रुद्रस्य विराजन्ते हि निर्जराः। रक्षन्तश्चैव तत्क्षेत्रं परिवारैः समं सदा ॥४५॥
लम्बोदरो महादेवः क्षेत्रमध्ये विराजते। तत्क्षेत्रं रक्षयन्भक्त्या सर्वलोकोपकारकः ॥४६॥
दण्डपाणिः सदा तत्र तिष्ठति रक्षयन् मुदा। द्वारं पाशुपतं तद्वै चाऽप्रतिमेन तेजसा ॥४७॥
वरुणोऽसौ गणैः सार्द्धं सततं प्रविराजते। तत्क्षेत्रं रक्षयन् देवः सर्वभूतदयापरः ॥४८॥
तत्र वागीश्वरी देवी राजते स्वगणैः समम्। वरदाऽभूत्सतीनां सा भक्तेभ्यो वाक्प्रदायिनी ॥४९॥
नारायणो महादेवः सर्वलोकवरप्रदः। तत्र विराजतेऽजस्रं मुदा क्षेत्रं प्रपालयन् ॥५०॥
तथा चैवोत्तरे द्वारे रक्षका निर्जराः सदा। विराजन्ते गणैः सार्द्धं क्षेत्रपाला इव भृशम्[१७] ॥५१॥
एकदन्तो गणेशानो लोकवन्द्यो वरप्रदः। शोभते[१८] सततं तत्र तद्द्वारं पालयन् स्थितः ॥५२॥
नन्दिकेशो महावीरः शर्वलब्धवरोत्तमः। राजते चोत्तरे द्वारि तत्क्षेत्रं रक्षयन्स्थितः ॥५३॥
पौलस्त्यश्च महात्माऽसौ गुह्यकैः सह राजते। तत्क्षेत्रं पालयन्नित्यं हरपादार्चने रतः ॥५४॥
निधिप्रपालकोऽजस्रं[१९] धनाधिपो हि शूलिनः। विराजते गदाहस्तः सर्वशत्रून्[२०] प्रतर्जयन् ॥५५॥
तत्रैव विजयादेवी विराजते हि सन्ततम्। योगिनीभिः समं क्षेत्रे भक्तवाञ्छाफलप्रदा ॥५६॥

---

भगवान् पशुपतिनाथको पश्चिम ढोकामा त्यस क्षेत्रको रक्षा गर्दै देवताहरू परिवारका साथ सधैँ बस्ने गर्छन्। सबै प्राणीको उपकार गर्ने महान् देवता लम्बोदर भक्तिपूर्वक त्यस भेगको रक्षा गर्दै पाशुपतक्षेत्रमा विराजमान हुनुभएको छ। त्यहाँ अनुपम तेज भएका दण्डपाणि सधैँ प्रसन्न भएर पशुपतिको ढोकालाई रक्षा गरेर बस्नुभएको छ। सबै प्राणीहरूमाथि दया गर्ने करुणामय वरुण देवता आफ्ना गणहरूका साथै त्यस क्षेत्रको रक्षा गर्दै विराजमान हुनुभएको छ ॥४५–४८॥

सतीहरूलाई वरदान दिने र भक्तहरूलाई वाक्सिद्धि गराउने वागीश्वरी देवी त्यहाँ आफ्ना गणहरूका साथ विराजमान हुनुभएको छ। त्यहाँ सबै लोकलाई वर दिने महान् देवता नारायण हर्षसित त्यस क्षेत्रको पालना गर्दै बस्नुभएको छ। त्यस्तै उत्तरपट्टिको ढोकामा आफ्ना गणहरूलाई साथमा लिएर सम्पूर्ण देवताहरू त्यस क्षेत्रको बारम्बार रक्षा गर्दै बसेका छन्। लोकपूज्य वरदाता एकदन्त गणेश त्यस द्वारको सदा पालना गर्दै त्यस क्षेत्रमा विराजमान भगवान् शङ्करबाट उत्तम वरदान प्राप्त गर्ने, महावीर नन्दिकेश्वर उत्तरद्वारमा त्यस क्षेत्रको रक्षा गर्दै विराजमान हुनुभएको छ। भगवान् शङ्करको पाउको सेवामा तत्पर महात्मा कुबेर पनि यक्षगणहरूका साथमा रहेर त्यस क्षेत्रको पालना गर्दै विराजमान हुनुभएको छ। कुबेर सधैँ भगवान् शङ्करका कोषको रक्षा गर्नुहुन्छ, उहाँ सबैसँग द्वेष गर्नेहरूको मनमा त्रास पैदा गर्ने गदा हातमा लिएर रहनुभएको छ। भक्तले चाहेको फल दिने विजयादेवी योगिनीहरूका साथ सधैँ त्यस क्षेत्रमा विराजमान हुनुहुन्छ ॥४९–५६॥

---

१७. तत्क्षेत्रं रक्षयन्मुहु इति न.सं.पु.पाठः।
१८. शुशुभे इति न.सं.पु.पाठः।
१९. निधिप्रपालितोऽजस्रम् इति न.सं.पु.पाठः।
२०. सर्वद्विषम् इति न.सं.पु.पाठः।

सिद्धदेहाः समासन्ते शिवपादार्चने रताः । योगाभ्याससमायुक्ताः पाशुपते महास्थले[२१] ॥५७॥
तत्र प्रपालका दिक्षु दिक्पालाश्च हरात्मकाः । विराजन्ते हि तत्क्षेत्रं स्वर्गमोक्षफलप्रदम् ॥५८॥
शक्रो वह्निः कृतान्तश्च नैर्ऋतो वरुणोऽनिलः । कुबेरश्चैवमीशानस्तद्रक्षार्थं[२२] पृथक् स्थिताः ॥५९॥
पशुपतेश्चतुर्दिक्षु संस्थितास्तत्र भैरवाः । शक्त्या युता गणैः सार्द्धं राजमाना वरप्रदाः ॥६०॥
उन्मत्तश्चासिताङ्गश्च रुरुः कालः क्रमात्ततः । संहारकस्तथा क्रोध आनन्दश्चण्ड एव च ॥६१॥
ग्रहाश्च संस्थितास्तत्र पाशुपतसुरक्षकाः[२३] । पशुपतेर्वरं लब्ध्वा तस्य पादार्चने रताः ॥६२॥
तत्रैव नागराजोऽसौ वासुकिर्नाम विश्रुतः । हरात्मा राजतेऽजस्रं शिवप्रियतमः सखा ॥६३॥
यमाद्यं प्रणमन् भक्त्या पशुपेशं विलोकयेत्[२४] । ततः सुफलभुग् यात्री शाङ्करे भासतेऽनिशम् ॥६४॥
पुण्यं पाशुपतं क्षेत्रं देवानां निलयं भवेत् । सुराणां नगरीभूतं काममोक्षफलप्रदम् ॥६५॥
धर्मो रक्षति नित्यं स[२५] पुरीं पाशुपतीं मुने । क्षयं यान्ति च पापानि यस्यां रुद्रप्रसादतः ॥६६॥
पाशुपती पुरी धन्या यस्यां विराजते हरः । प्रमथैः शक्तिभिर्देवैः समं पुण्यतमा पुरी ॥६७॥

---

त्यस पाशुपतक्षेत्रमा शङ्करका पाउको सेवामा संलग्न भएका योगाभ्यासी सिद्धहरू सधैँ विराजमान हुन्छन् । त्यहाँ शिवरूप भएका दिक्पालहरू सबै दिशाको रक्षा गर्दै विराजमान भएका छन् । त्यो क्षेत्र स्वर्ग तथा मोक्षको फल दिने क्षेत्र हो । इन्द्र, अग्नि, निर्ऋति, वरुण, वायु, कुबेर र ईशानहरू छुट्टाछुट्टै रहेर त्यस क्षेत्रको रक्षा गरिरहेका छन् । वर दिने उन्मत्त, असिताङ्ग, रुरु, काल, संहारक, क्रोध, आनन्द र चण्ड नाम गरेका आठ भैरवहरू आफ्ना शक्ति र गणले सहित भएर पशुपतिको चारै दिशामा रहेका छन् ॥५७-६१॥

पशुपतिबाट वर पाएर उहाँको चरणको सेवामा लागेका ग्रहहरू पनि पाशुपतक्षेत्रको रक्षाका निमित्त त्यसै ठाउँमा रहेका छन् । त्यसै ठाउँमा शङ्करका प्रिय मित्र शिवस्वरूप वासुकि नाम गरेका नागराज सधैँ विराजमान हुनुहुन्छ । यस शिवजीको क्षेत्रमा रहेका नागराजलाई पहिले भक्तिपूर्वक नमस्कार गरेर यात्रीले पशुपतिको दर्शन गऱ्यो भने त्यसले असल फल प्राप्त गर्छ र शङ्करमय बन्दै निरन्तर सुशोभित हुन्छ ॥६२-६४॥

पाशुपतक्षेत्र पवित्र क्षेत्र हो, यो देवताहरूको घर हो, कामना पूर्ण गर्ने र मोक्षफल दिने यो क्षेत्र देवताहरूको नगर हो । धर्मले पशुपतिको यस नगरलाई सधैँ रक्षा गरेका छन् । यस नगरमा भगवान् शङ्करको कृपाले सबै पापहरू नाश भएर जान्छन् । जहाँ भगवान् प्रमथ आदि गण, देवता र शक्तिहरूले युक्त भएर विराजमान हुनुभएको छ, त्यस्तो पवित्र पाशुपति पुरी धन्य छ ॥६५-६७॥

---

२१. विराजते इति न.सं.पु.पाठः ।
२२. कुबेरश्चैवमीशानस्तद्रक्षय इति न.सं.पु.पाठः ।
२३. पाशुपतं प्ररक्षयन् इति न.सं.पु.पाठः ।
२४. प्रदर्शयेत् इति न.सं.पु.पाठः ।
२५. धर्मो हि रक्षयन् नित्यम् इति न.सं.पु.पाठः ।

तेजोमयी पुरी भद्रा जाम्बूनदमयी क्षितिः। धन्या पाशुपती शुभ्रा योजनैकं विराजते ॥६८॥
हिमवतो महाशृङ्गे[२६] नगरी सा विराजते। धर्मार्थकाममोक्षांश्च[२७] तत्रस्थानां ददाति या ॥६९॥
महापद्मैकपत्रे सा राजते मेरुकर्णिके। सहस्रदलके तस्यां कर्णिके च शिवः स्थितः ॥७०॥
माहेश्वरी पुरी धन्या योजनैकं विराजते। माहेश्वरी पुरी धन्या योजनैकं प्रशंसिता ॥७१॥
लिङ्गमयी मही सर्वा निर्वाणदा विराजते । पुरी माहेश्वरी साक्षात्सर्वदा सर्वदा मुने ॥७२॥
देवासुरमनुष्याणां भक्तानां[२८] नगरी भवेत्। तेजोमयी पुरी साक्षादुमामाहेश्वरी पुरा ॥७३॥
त्रैलोक्यदुर्लभा पुण्या दिविस्थैः काङ्क्षिता सदा।
तेजोमयं पत्तनमीश्वरस्य तन्मध्यसंस्थो गिरिशो हि साक्षात्।
विराजतेऽजः सुरनायकोऽसौ परात्परो निर्गुण ईश्वरो वै ॥७४॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे पाशुपतक्षेत्रमाहात्म्यं नामैकसप्ततितमोऽध्यायः ॥७१॥

---

तेजस्वी यो नगर कल्याणदायी छ। सुवर्णमय यो भूभाग कल्याणकारक छ। एक योजनसम्म फैलिएको यो क्षेत्र धन्य छ। हिमालयको ठूलो शिखरमा यो शहर रहेको छ। त्यहाँ बस्ने प्राणीहरूलाई यस नगरले धर्म, अर्थ, काम र मोक्ष दिन्छ। ठूलो सहस्र दल भएको कमलको पत्रमा यो शहर रहेको छ। त्यसको कर्णिकामा भगवान् शिव विराजमान हुनुभएको छ। एक योजनसम्म फैलिएको यो माहेश्वरी पुरी धन्य छ। एक योजनसम्म फैलिएर रहेका दिव्य क्षेत्रहरूका कारण यो पाशुपती पुरी सबैद्वारा प्रशंसित छ॥६८-७१॥

यहाँको सम्पूर्ण भूमि लिङ्गमय छ र मुक्तिदायक छ। यहाँको सम्पूर्ण धरा मुक्तिदायिनी बनेर रहेको छ। यो साक्षात् माहेश्वरी पुरी हो र यसले सधैं सबैलाई सबै कुरा प्रदान गर्दछ। हे अगस्त्य मुनि ! देवता, राक्षस, मानिस र भक्तहरूलाई सधै सबै कुरा दिने साक्षात् महेश्वरको यो शहर हो। यो माहेश्वरी पुरी साक्षात् पार्वतीको रूप हो। यसलाई तीनै लोकले पनि प्राप्त गर्न सक्दैनन् र देवताहरूले पनि यस शहरमा बस्न ठूलो आकाङ्क्षा गरेका हुन्छन् ॥७२-७३½॥

यो भगवान् शङ्करको तेजोमय नगर हो। यसै नगरको बीचमा कहिल्यै नजन्मने, पर्वतमा सुत्ने, निर्गुण देवताका नायक सदाशिव ईश्वर विराजमान हुनुभएको छ॥७४॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा पाशुपत क्षेत्रको माहात्म्यनामक एकहत्तरौं अध्याय पूरा भयो।

---

२६. महासानौ इति न.सं.पु.पाठः। २७. धर्मार्थकाममोक्षाणि इति न.सं.पु.पाठः।
२८. देवासुरमनुष्येभ्यो भक्तेभ्य इति न.सं.पु.पाठः।

# द्विसप्ततितमोऽध्यायः

पाशुपतीपुरीमाहात्म्यम्

स्कन्द उवाच

धन्या सा नगरी पुण्या यस्यां विराजतेऽनिशम्। पशुपतिर्गणैः सार्धं ज्योतिर्लिङ्गात्मको विभुः[1] ॥१॥
धन्या पुण्यतरा ज्ञेया पुरी पाशुपती मुने। द्विसप्तभुवनेष्वेषा भवेच्छ्रेष्ठा सुदुर्लभा ॥२॥
जम्बूद्वीपे च पुर्यौ द्वे रुद्रेणाऽधिष्ठितेऽनिशम्। काशी पाशुपती साक्षात् समासते सुरालये ॥३॥
काश्याश्चतुर्गुणं मान्या पुरी पाशुपती यतः। धर्मार्थकाममोक्षास्ते लभ्यन्तेऽयत्नतः किल[2] ॥४॥
एको मोक्षस्तु काश्यां वै लभ्यते जन्तुभिः सदा। उमामाहेश्वरीपुर्याञ्चतुर्वर्गोघटोद्भव ॥५॥
तस्मात्काश्या गरिष्ठा स्यात्पाशुपती पुरी वरा। प्रलभ्यते यतो लोकैश्चतुर्वर्गो ध्रुवं किल ॥६॥
देव्याः स्थानोद्भवं लिङ्गं तेजोमयं चतुर्मुखम्। तस्मादुत्तरकाशीति हिमवद्दक्षिणे यतः ॥७॥
गङ्गाया उत्तरे भागे हिमवत्सानुगह्वरे। रुद्रप्रियतमं तीव्रं नगरं राजतेऽनिशम् ॥८॥
न मुञ्चति क्षणं चाऽपि शङ्करो नगरीमिमाम्। तस्मादुत्तरकाशीति चोत्तरपुण्यभूगता ॥९॥
उद्गताऽतिशयेनैव चोत्तरेण च सन्ततम्। काशीतोऽपि प्रदीप्ता चोत्तरकाशीति विश्रुता ॥१०॥
गौरीश्वरो बलिध्वंसी तरलो वासुकिर्विधिः। अनन्ताश्चाऽपि भ्राजन्ते तदीयानन्ददा मुदा[3] ॥११॥
रुद्रप्रियतमा तीव्रं नमस्कारात्सुमुक्तिदा। तस्मादुत्तरकाशीति विश्रुता लोकदुर्लभा ॥१२॥

---

## अध्याय – ७२

पाशुपती पुरीको महिमा

कार्तिक स्वामीले भन्नुभयो – जहाँ भगवान् पशुपतिनाथ महाप्रभु ज्योतिर्लिङ्गको रूप लिएर सधैँ विराजमान हुनुभएको छ, त्यो पवित्र शहर धन्य छ। हे अगस्त्य मुनि ! चौधै भुवनमा सबैभन्दा दुर्लभ भएको सर्वश्रेष्ठ पवित्र यो नगरी सबैभन्दा धन्य छ भनेर जान्नुहोस्। जम्बूद्वीपमा भगवान् रुद्र बस्नुभएका दुईवटा नगरी छन्। एउटा काशीनगरी र अर्को पाशुपतिनगरी। यी दुबैमा देवताहरूका धेरै मन्दिरहरू छन्। जसमा धर्म, अर्थ, काम र मोक्ष सबै चीज प्राप्त हुन्छ, त्यो पाशुपती पुरी काशीभन्दा चौगुना पूजनीय छ ॥१–४॥

हे अगस्त्य मुनि ! काशीमा प्राणीहरूले खालि मोक्ष पाउँछन्, उमा र महेश्वरको यस नगरीमा धर्म, अर्थ, काम र मोक्ष चारै पुरुषार्थ प्राप्त गर्छन्। त्यसैले गर्दा पाशुपती पुरी काशीभन्दा महत्त्वपूर्ण छ किनभने यहाँका प्राणीहरूले धर्म, अर्थ, काम र मोक्ष सबै पुरुषार्थ प्राप्त गर्न सक्छन्। गुह्येश्वरी देवीको स्थानबाट पैदा भएको तेजोमय चतुर्मुख लिङ्ग यहाँ छ। हिमालयको दक्षिणपट्टि रहेको हुँदा यस पाशुपती पुरीलाई उत्तरकाशी भनिएको हो। गङ्गाजीको उत्तरपट्टि हिमालयको काखमा रहेको यो नगर भगवान् शङ्करको अत्यन्त प्रिय छ। यस नगरीलाई शङ्करले एकछिन पनि छोड्नुहुन्न। उत्तराखण्डको पुण्यभूमिमा रहेको हुँदा यसलाई उत्तरकाशी भन्छन् ॥८–९॥

उत्तर भूभागमा अत्यन्त माथि उठेको र अपूर्व रूपमा प्रकाशमान भएको हुँदा यो नगरी उत्तरकाशी नामले प्रसिद्ध भएको हो। गौरीश्वर भगवान् पशुपति, बलिलाई ध्वंस गर्ने विष्णु, चञ्चल वासुकि नाग, ब्रह्मा र अनन्त शेषनागहरू यहाँ शोभायमान छन्। ती सबैलाई आनन्द दिने यो पुरी ज्यादै सुन्दर छ। भगवान्लाई नमस्कार गर्नाले मात्रै पनि मुक्ति प्राप्त गराउने यो नगरी रुद्रको अत्यन्त प्रिय छ। सबै लोकका निमित्त दुर्लभ मानिएको यो नगरी उत्तरकाशीका नामले प्रसिद्ध छ ॥१०–१२॥

---

१. ज्योतिर्लिङ्गो महाविभु इति न.सं.पु.पाठः।
२. धर्मार्थकाममोक्षाणि यस्यां प्रलभ्यन्ते किल इति न.सं.पु.पाठः।
३. अनन्ता भ्राजते तेषां शयनस्थानमाश्रयम् इति न.सं.पु.पाठः।

दिविस्था यत्र पश्यन्ति सर्वान् माहेश्वरान् गणान्। मानुषान् शिवरूपाँश्च मानुषीः सुररूपिणीः[४] ॥१३॥
स्वच्छन्दं विचरन्त्यार्यास्तस्यान्ते किल निर्भरम्। दिविस्थास्तान् प्रपश्यन्ति त्रिनेत्रानिव निर्भयाः[५] ॥१४॥
धन्यतमाश्च तत्रस्था नरा रुद्रपुरौकसः। चतुर्वर्गफलैर्युक्ता निष्पापतनुधारिणः[६] ॥१५॥
दिविस्थास्ताँश्च पश्यन्ति त्रिनेत्रानत्र[७] शूलिनः। वृषध्वजान् जटाशीर्षान् तद्गणाँश्चन्द्रमौलिनः ॥१६॥
दिविस्था यत्र वाञ्छन्ति चतुर्वर्गफलाप्तये। त्रिदिवाधिकृते राज्ये स्थातुं रुद्रेण वै समम् ॥१७॥
कोटिजन्मार्जितात् पुण्यादन्यक्षेत्रस्य मानुषैः। पुरी पाशुपती पुण्या लभ्यते मोक्षदा ध्रुवम् ॥१८॥
कृमिकीटपतङ्गाश्च वृक्षाश्च पशवस्तथा। तेऽपि प्राप्स्यन्ति निर्वाणं धीमतां किमु वच्म्यहम् ॥१९॥
अन्त्यजोऽपि भवेद्विप्रस्तत्र देहान्तरे मुनिः। चतुर्वर्गफलं प्राप्य गच्छति स परं पदम् ॥२०॥
दुर्लभं मानुषं देहं सम्प्राप्य यो हि मूढधीः। न गच्छति च तद्राज्यं दुःखदग्धः स एव हि ॥२१॥
तस्याञ्च ये न पश्यन्ति ज्योतिर्लिङ्गं परात्परम्। वाग्वत्याञ्च कृतस्नानाः पशुजा दुःखिनो जनाः[८] ॥२२॥
पशुपतिं न पश्यन्ति सुकृतैर्वञ्चिताश्च ये। पशुयोन्युद्भवा नित्यं भ्रमन्ति च महीतले ॥२३॥
असामर्थ्ये हि मर्त्यानां दूरस्थानां विशेषतः। गन्तुं तद्दर्शनार्थञ्च प्रविधेयं[९] विधिं शृणु ॥२४॥
यस्यां विराजते देवी पशुपतिगणैः सह। वाग्वती निम्नगाभिश्च पाशुपत्यै नमो नमः ॥२५॥
इति भक्त्या नरो यो हि यत्र तत्र स्थितोऽपि वा। नित्यं ब्रूयान्मुदा भक्त्या तत्र यात्राफलं लभेत् ॥२६॥

---

यस पशुपतिक्षेत्रमा सारा स्त्री–पुरुषहरूलाई स्वर्गमा रहने देवताहरूले महेश्वरका गणका रूपमा हेर्छन्। यहाँका पुरुषलाई शिव र नारीलाई शिवाका रूपमा दर्शन गर्दछन्। यस क्षेत्रको आसपासमा सज्जनहरू स्वच्छन्द भएर विचरण गर्छन्। स्वर्गका पुरुषहरूले यिनीहरूलाई निर्भय भएर हिँड्ने शङ्करजस्तै देख्छन्। पापरहित शरीर भएका, धर्म, अर्थ, काम एवं मोक्ष चारै पुरुषार्थले युक्त भएका शिवपुरीमा बस्ने मानिसहरू अत्यन्त धन्य छन्। स्वर्गमा बस्ने पुरुषहरूले पशुपतिको नगरमा बस्ने मानिसहरूलाई तीन आँखा भएका, त्रिशूल लिने, ध्वजामा साँढेको चिह्न भएका, शिरमा जटा र मुकुटमा चन्द्रमा लगाउने शिवका गणका रूपमा हेर्छन्। स्वर्गमा बस्ने देवताहरू पनि चतुर्वर्ग फलप्राप्तिका लागि भगवान् रुद्रका साथै यस देवराज्यमा बस्न चाहन्छन्। अरू क्षेत्रमा बस्ने मानिसहरूले करोडौँ जन्मदेखि पुण्यसञ्चयबाट मोक्षदायिनी यस पाशुपती पुरीमा बस्ने सौभाग्य पाउँछन्। कमिला, कीरा, फट्याङ्ग्रा, रुख र पशुहरूले पनि यस ठाउँमा बसेर मुक्ति प्राप्त गर्छन् भने ज्ञानी मानिसहरूको विषयमा त म के भनूँ ? ॥१३–१९॥

हे अगस्त्य मुनि ! तल्लो जातिमा पैदा भएता पनि यस क्षेत्रमा बस्ने व्यक्तिले चतुर्वर्ग फल प्राप्त गरी अर्को जन्ममा गएर परमपद प्राप्त गर्छ। दुर्लभ मानिसको चोला पाएर पनि मूर्खबुद्धि भएको जो व्यक्ति त्यस पशुपतिराज्यमा जाँदैन भने दुःखले डढेको भनेको त्यही नै हो। जुन प्राणीहरू वाग्वतीमा स्नान गरेर परमेश्वर ज्योतिर्लिङ्गको भक्तिपूर्वक दर्शन गर्दैनन्, ती व्यक्तिहरू पशु हुन् र दुःखका पात्र हुन् ॥२०–२२॥

जुन मानिसहरूले भगवान् पशुपतिको एकपटक मात्र पनि दर्शन गर्दैनन्, पुण्यले ठगिएका ती मानिसहरू पशुयोनिमा पैदा भएर पृथ्वीतलमा घुमिरहेका हुन्छन्। टाढा बस्ने मानिसहरूलाई त्यस क्षेत्रमा पुगेर दर्शन गर्ने सामर्थ्य प्राप्त भएन भने त्यसबेला गर्नुपर्ने विधि सुन्नुहोस्। जहाँ वाग्मती आदि गरिएका नदीहरू छन्, भगवती गुह्येश्वरी र आफ्ना गणहरूका साथ श्रीपशुपतिनाथ विराजमान हुनुहुन्छ, त्यस्तो पाशुपती नागरीलाई बारम्बार नमस्कार छ। जुन मानिसले यस्तो अर्थ प्रदान गर्ने 'यस्यां विराजते' इत्यादि पद्यलाई जहाँ बसेर भए पनि प्रतिदिन भक्तिपूर्वक प्रसन्न भएर पाठ गर्छ, त्यस व्यक्तिले त्यस नगरीमा पुगेको फल पाउँछ ॥२३–२६॥

---

४. यावन्तो मानुषाः सन्ति स्त्रीभिः पाशुपते समम् इति न.सं.पु.पाठः।
५. त्रिनेत्र इव निर्भयम् इति न.सं.पु.पाठः।
६. पापनिर्लिप्तदेहिन इति न.सं.पु.पाठः।
७. त्रिनेत्रिणश्च इति न.सं.पु.पाठः।
८. वाग्मत्यां स्नापयन्भक्त्या पशुजा दुःखभाजना इति न.सं.पु.पाठः।
९. तल्लोकितु तत्र चाऽनुष्ठेयम्, इति न.सं.पु.पाठः।

नेपाल इति यो ब्रूयाज्ज्ञानतोऽज्ञानतोऽपि वा। नित्यकृतैनसा मुक्तस्तत्रैव जायते पुनः ॥२७॥
तत्र पञ्चत्वमापन्नः सर्वपापैर्विवर्जितः। पशुपतेः प्रसादात्स शिवलोकं व्रजेत्सुखम् ॥२८॥
जिह्वाग्रे वर्त्तते यस्य शाङ्करञ्चतुरक्षरम्। पुरी पाशुपती चेति स हि पापैर्विवर्जितः ॥२९॥
जिह्वाग्रे चेति यस्यास्ते पशुपतिर्विकिल्विषः। यत्र कुत्र स्थितो वाऽपि स मुक्तो नाऽत्र संशयः ॥३०॥
पशुपतिरिति प्राज्ञो यो ब्रूयाद् भक्तिमान् जनः[१०]। क्रोधान्मोहाद् भयाद्दम्भात्स मुक्तो लीलयाऽपि वा ॥३१॥
भये वाऽऽपदि रोगार्तौ सङ्ग्रामे सङ्कटे च यः। पशुपतिरिति ब्रूयात्तेषु रक्षति तं शिवः ॥३२॥
सकृदपि नमन् गत्वा तत्पुरे पश्यति प्रभुम्। पशुपतिं मुदा भक्त्या तस्य पुण्यफलं शृणु ॥३३॥
सर्वेषाञ्चैव यज्ञानां तीर्थानाञ्चैव यत् फलम्[११]। सर्वयागार्जितं पुण्यं पुण्यं तच्चोपवासजम्[१२] ॥३४॥
प्राप्नोति सकलं[१३] धन्यो विमुखः पशुयोनिषु। अर्कायुताभयानस्थः समुद्धृत्य कुलानि च[१४] ॥३५॥
चतुर्वर्गफलं प्राप्य शिवलोकं स गच्छति। महाश्चर्य्यं महासौख्यं सर्वलोकैः सुदुर्लभम् ॥३६॥
तत्रैव पञ्चरात्रं यः स्थित्वा पञ्चोपचारकैः। तद्भक्त्या पशुभर्त्तारं पूजयेद्वाग्वतीजलैः ॥३७॥
शिवमुद्दिश्य चाऽऽर्योऽसौ तन्मन्त्रं प्रजपेत्सुधीः। तन्मनस्कतया ध्यायन्[१५] जितेन्द्रियो हि सात्त्विकः ॥३८॥
इहैव पुनरावृत्तिं विहाय सर्वविग्रहान्। गच्छति परमं स्थानं देवासुरैः सुदुर्ल्लभम् ॥३९॥
मन्त्रज्ञश्च सुधीर्भक्त्या गुह्येश्वरीं समर्चयन्। सकृज्जपति तत्रैव तस्य पुण्यफलं शृणु ॥४०॥

---

जानेर होस् वा नजानीकन होस्, जसले नेपाल शब्दको उच्चारण गर्छ, त्यो व्यक्ति त्यस दिन गरेको सम्पूर्ण पापबाट मुक्त हुन्छ। नेपालमा शरीर छाड्ने व्यक्ति सम्पूर्ण पापबाट मुक्त भएर पशुपतिनाथको कृपाले आनन्दसित शिवलोकमा जान पाउँछ। जसको जिब्रोको टुप्पामा पशुपति भन्ने यो शिवजीको चारवटा अक्षर र पाशुपती पुरी रहन्छ, त्यो सबै पापबाट मुक्त हुन्छ। जसको जिब्राको टुप्पामा पशुपति भन्ने चार अक्षर रहेको हुन्छ, त्यो जहाँ रहेको भएता पनि पापरहित भएर मुक्त हुन्छ, यसमा सन्देह छैन ॥२७–३०॥

हे भक्त ! जुन बुद्धिमान्ले रीसले, मोहले, डरले, अभिमानले, ख्यालठट्टा गरेर अथवा भक्तिभावले पशुपति शब्दको उच्चारण गर्छ, त्यो मुक्त हुन्छ। डर, आपत्ति, रोग, सङ्ग्राम, तथा सङ्कट आइपरेको बेलामा जसले पशुपति भन्ने चार अक्षर उच्चारण गर्छ, शिवजीले त्यसको रक्षा गर्नुहुन्छ ॥३१–३२॥

एकपटक मात्रै भए पनि शिवजीको त्यस नगरमा गएर जसले भक्तिपूर्वक पशुपति प्रभुको दर्शन गर्छ, त्यसको पुण्यफल सुन्नुहोस्। त्यस व्यक्तिले सम्पूर्ण यज्ञ, सम्पूर्ण तीर्थबाट जे जति फल पाउने हो त्यो पाउँछ। त्यसले सम्पूर्ण यज्ञबाट पैदा हुने पुण्य प्राप्त गर्छ र सम्पूर्ण उपावासबाट पैदा हुने फल पाउँछ। ती–ती फल प्राप्त गर्ने व्यक्तिले पशुयोनिबाट मुक्त भएर धन्य हुँदै सात कुललाई उद्धार गर्छ। धर्म, अर्थ, काम तथा मोक्ष यी चार पुरुषार्थ प्राप्त गरी दश हजार सूर्यको जस्तो तेज भएको यानमा चढेर अत्यन्त आश्चर्यदायक, ठूलो सुखले युक्त भएको र सम्पूर्ण प्राणीहरूका लागि दुर्लभ शिवलोकमा जान्छ ॥३३–३६॥

त्यस ठाउँमा पाँच रात बसेर वाग्मतीको जलले स्नान गरी भक्तिपूर्वक शिवजीलाई पूजा गरेर जसले उहाँको मन्त्र जप्छ, जितेन्द्रिय भई उहाँमै मन लगाएर ध्यान गर्छ, त्यस्तो सात्त्विक व्यक्तिले यस संसारमा जन्मनु र मर्नु नपर्ने गरी सम्पूर्ण योनिको शरीरलाई छोडेर देवताले र राक्षसले पनि पाउन नसक्ने परमपद प्राप्त गर्छ। मन्त्र जान्ने व्यक्तिले भक्तिपूर्वक गुह्येश्वरीको पूजा गरेर एकपटक मात्रै भए पनि त्यहाँ बसेर उहाँको मन्त्र जप गर्दछ भने त्यसबाट प्राप्त हुने फल सुन्नुहोस् ॥३७–४०॥

---

१०. ब्रूयादभक्तभक्तिमान् इति न.सं.पु.पाठः।
११. सर्वतीर्थोद्भवं फलम् इति न.सं.पु.पाठः।
१२. सर्वदा चोपवासजम् इति न.सं.पु.पाठः।
१३. तत्फलं प्राप्तवान् इति न.सं.पु.पाठः।
१४. कुलसप्त समुद्धृत इति न.सं.पु.पाठः।
१५. ध्यायतस्तन्मनस्को वै इति न.सं.पु.पाठः।

सर्वदानोपवासानां यज्ञानां योगकर्मणाम्[१६] । अटताञ्चैव तीर्थेषु कोटिकोटिगुणं फलम् ॥४१॥
तत्फलं नृवरो लब्ध्वा लीयतेऽन्ते परात्परे । ज्योतिर्मये शिवाकारे वाङ्मनोभिरगोचरे ॥४२॥
यो मृतो यत्र कुत्रापि क्षेत्रे पाशुपते नरः । विधूय सर्वपापानि शिवलोकं स गच्छति ॥४३॥
पातकैरपि संयुक्तो ज्ञानैर्हीनोऽपि वा पुनः । किं वच्मि ज्ञानसंयुक्तो मृतः प्राप्नोति तत्फलम् ॥४४॥
क्षेत्रे पाशुपते यो हि सकृच्छ्राद्धं करोति च । विंशतिकुलमुद्धृत्य शिवलोकं स गच्छति ॥४५॥
आर्यातीर्थान्तिके यो वै पिण्डं ददाति शाङ्करे । कुलकोटिं समुद्धृत्य रुद्रलोकं व्रजेत्सुखम् ॥४६॥
वाग्वत्याः सलिलं यो हि घटेनोद्धृत्य शङ्करम् । धृत्वा च स्कन्धयोर्यस्तु स्नापयेत् तत्फलं शृणु[१७] ॥४७॥
यावत्तदम्भसां बिन्दुस्तावत्कालं स पुण्यकृत्[१८] । कुलकोटिं समुद्धृत्य रुद्रलोके प्रमोदते ॥४८॥
यो भोजयेद् द्विजान् तत्र शिवमुद्दिश्य भक्तितः । क्षितौ सर्वसुखं भुक्त्वा शिवलोकं स गच्छति ॥४९॥
यत्किञ्चिद्दीयते दानं कामेन परमार्थतः । तत्सर्वमक्षयं भूत्वा[१९] तत्तल्लोकं च गच्छति ॥५०॥
पुरी पाशुपती धन्या चतुर्वर्गफलप्रदा । ज्योतिरूपं महालिङ्गं यत्राग्नौ तप्तकाञ्चनम् ॥५१॥
पुरी पाशुपती दिव्या विद्योतते ह्यहर्निशम् । सूर्येणेव जगत्सर्वं ज्योतिर्लिङ्गस्य तेजसा ॥५२॥
अव्यक्तं परमं लिङ्गं प्रकाशते ह्यहर्निशम् । जाम्बूनदमये देशे स्वर्णदीपशिखा यथा ॥५३॥
योगिनां मानसे नित्यं ज्योतिःशिखा विराजते । दीपशिखाकृतिः सा च[२०] योगिभिरेव दृश्यते ॥५४॥
धन्यास्त एव मर्त्याश्च दृष्टः पशुपतिश्च यैः । साक्षाद्विराजमानोऽसौ ज्योतिःपुञ्जो हृदि स्थितः ॥५५॥

---

धेरै दिनसम्म उपवास गर्ने व्यक्तिले, यज्ञ गर्ने ले, योगीहरूले र सम्पूर्ण तीर्थ गर्ने तीर्थालुहरूले जति फल पाउँछन्, एकपटक मात्रै भए पनि उक्त मन्त्र जप गर्ने व्यक्तिले त्योभन्दा करोडौं करोड गुना बढी फल पाउँछ। त्यस्तो फल प्राप्त गर्ने मानिस अन्त्यमा गएर वचन तथा मनले थाहा पाउनै नसकिने ज्योतिर्मय शिवस्वरूपमा विलीन हुन्छ। पाशुपत क्षेत्रको जुनसुकै भागमा मरेको भए तापनि त्यो व्यक्ति सम्पूर्ण पापबाट मुक्त भएर शिवलोक जान्छ। ज्ञान नभएको पापी व्यक्तिले त त्यो फल पाउँछ भने ज्ञान भएर मरेको व्यक्तिले के फल पाउँछ भनेर मैले के भन्नुपर्छ ? ॥४१-४४॥

पाशुपतक्षेत्रमा एकपटकमात्रै भए पनि जसले श्राद्ध गर्छ, त्यो मानिस बीस कुललाई उद्धार गरेर शिवलोकमा जान्छ ॥४५॥ पाशुपतक्षेत्रमा रहेको आर्यातीर्थको नजिके गएर जसले पिण्डदान गर्छ, त्यो व्यक्ति करोडौं कुललाई उद्धार गरेर शिवलोकमा आनन्दपूर्वक बस्छ। जसले वाग्मती नदीको जल घैंयले उबाएर काँधमा बोकेर लगी शङ्करलाई स्नान गराउँछ, त्यसको पुण्यफल सुन्नुहोस् ॥४७॥ त्यसो गर्ने व्यक्ति घैंयमा जति पनि जलविन्दुहरू छन् त्यति वर्षसम्म करोडौं कुलको उद्धार गरेर रुद्रलोकमा आनन्दपूर्वक रहन्छ ॥४५-४८॥

जसले शिवलाई सम्झिएर ब्राह्मणहरूलाई त्यस धरातलमा भोजन गराउँछ, त्यो व्यक्ति सम्पूर्ण सुखको उपभोग गरेर शिवलोक जान्छ। परमार्थका निमित्त कुनै कामना गरेर त्यहाँ जे जति दान दिइन्छ त्यो सबै अक्षय हुन्छ र त्यसको फल प्राप्त गरेर त्यो व्यक्ति आफूले चिताएको लोकमा जान्छ। चारै पुरुषार्थ प्रदान गर्ने पशुपतिको नगरी धन्य छ, जहाँ आगोमा तताएको सुनजस्तो भगवान् पशुपतिको ज्योतिस्वरूप महालिङ्ग रहेको छ ॥४९-५१॥

सूर्यले संसारलाई उज्यालो पारेझैं ज्योतिर्लिङ्गको तेजले दिव्य पाशुपती नगरी रातदिन चम्किएको छ। सुवर्णमय देशमा सुवर्णदीपको ज्वालाजस्तै गरी अव्यक्त भएर रहेको श्रेष्ठ शिवलिङ्ग रातदिन प्रकाशित भएको छ। योगीहरूको मनमा जसरी ज्योतिको ज्वाला रहेको हुन्छ र त्यो ज्वाला योगीहरूले मात्र देख्न सक्छन्, त्यसरी नै जसले पशुपतिको भक्तिपूर्वक दर्शन गर्छन् तिनीहरूको हृदयमा मात्र भगवान् शिवको ज्योतिपुञ्ज विराजमान हुन्छ ॥५२-५५॥

---

१६. योगिनाञ्च यत् इति न.सं.पु.पाठः ।
१७. स्नापयेत् स्कन्धवाहेन तस्य पुण्यफलं शृणु इति न.सं.पु.पाठः ।
१८. समैककम् इति न.सं.पु.पाठः ।
१९. लब्ध्वा इति न.सं.पु.पाठः ।
२०. दीपशिखाकृतिं ताञ्च इति न.सं.पु.पाठः ।

मेदिनीहृदये साक्षाद् विराजते हि सन्ततम्। तेजःपुञ्जमयं लिङ्ग[२१] सर्वलोकैरगोचरम् ॥५६॥
धन्या नैपालका मर्त्यास्तद्रूपं गोचरं विभुम्। पश्यन्ति येऽपि देवानां साक्षात् पुनरगोचरम् ॥५७॥
यः पश्यत्यनिशं गत्वा पाशुपतीञ्च तत्र वै। नरोऽसौ भक्तिभावात्मा जीवन्मुक्तो न संशय ॥५८॥
अयोध्या मथुरा माया काशी काञ्ची ह्यवन्तिका। पुरी द्वारावती सप्त गरिष्ठा मोक्षदायिकाः ॥५९॥
तासाञ्चैव गरिष्ठा स्यात्पुण्या पाशुपती पुरी। यस्यां विराजते लिङ्गं वाग्वत्या सह सन्ततम् ॥६०॥
सत्ये काशीपुरी ज्ञेया द्वापरेऽवन्तिका तथा। त्रेतायुगे तथा माया चाऽयोध्या चैव मोक्षदाः ॥६१॥
गरिष्ठा हि कलौ प्राप्ते द्वारिका मथुरा पुरी। युगे युगे गरिष्ठास्ताः स्वर्गमोक्षफलप्रदाः ॥६२॥
तासां मध्ये महापुण्या चतुवर्गफलप्रदा। सर्वयुगे तथा ज्ञेया श्रेष्ठा पाशुपती पुरी ॥६३॥
कृते सत्यवती ज्ञेया त्रेतायाञ्च तपोवनी। द्वापरे मुक्तिसोपाना कलौ नैपालिका पुरी ॥६४॥
उवाह शिवगङ्गा सा यस्याः प्राच्यामधःस्थले[२२]। सर्वासां सरितां श्रेष्ठा सर्वकामफलप्रदा ॥६५॥
नास्ति चोत्तरकाश्यन्या स्वर्गतुल्या[२३] रसातले। चतुर्वर्गप्रदा नित्या भूगताऽप्यमरालया ॥६६॥
यः शृणोति च माहात्म्यं पाशुपत्याः सुभक्तितः। सर्वैनोभिर्विनिर्मुक्तः शिवलोकं स गच्छति ॥६७॥

विराजते शैवलिनी सुपुण्या, महत्तरङ्गैः किल वाग्वती सा।
सुरासुरैर्भक्तजनैश्च नित्यं, प्रसेविता या कलुषस्य हन्त्री ॥६८॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे पाशुपतीपुरीमाहात्म्यं नाम द्विसप्ततितमोऽध्यायः ॥७२॥

---

पृथ्वीको हृदयमा मात्र तेजको पुञ्जस्वरूप भएको शिवजीको लिङ्ग निरन्तर विराजमान भएको छ, यो सबैले देख्न सक्दैनन्। देवताहरूले पनि प्रत्यक्ष रूपमा देख्न नपाउने ज्योतिस्वरूप भगवान् शिवलाई जसले प्रत्यक्ष दर्शन गर्छ पाउँछन्, त्यस्ता नेपालका मानिसहरू धन्य छन्। जसले सधैं गएर भक्तिले विभोर हुँदै पशुपती पुरीको दर्शन गर्छ, त्यो व्यक्ति जीवन्मुक्त हुन्छ, यसमा शङ्का छैन ॥५६-५८॥

अयोध्या, मथुरा, काशी, काञ्ची, अवन्तिका र द्वारावती नाम गरेका सातवटा महत्त्वपूर्ण पुरीहरू मोक्षदायक मानिन्छन्। तिनीहरूभन्दा पनि पाशुपती पुरी अझ बढी पुण्यदायी छ, जहाँ भगवान् शिवको ज्योतिर्लिङ्ग वाग्मतीको नजिकै सधैं विराजमान भएको छ। सत्ययुगमा काशी नगरी, द्वापरयुगमा अवन्तिका पुरी, त्रेतायुगमा माया र अयोध्या मोक्षदायी मानिन्छन्। कलियुगमा द्वारिका र मथुरापुरी बढी पुण्यदायी मानिएका छन्। प्रत्येक युगमा ती महत्त्वपूर्ण पुरीहरू स्वर्ग तथा मोक्षदायी हुन्छन् ॥५९-६२॥

ती पुरीहरूभन्दा पनि पाशुपती पुरी सर्वश्रेष्ठ छ भनेर जान्नुहोस्, किनभने यस पुरीले सबै युगमा चारै पुरुषार्थ र महापुण्य प्रदान गर्छ ॥६३॥ यस पाशुपती पुरीलाई सत्ययुगमा सत्यवती भनिन्थ्यो, त्रेतायुगमा यसको नाम तपोवनी भयो, द्वापरयुगमा यसको नाम मुक्तिसोपान रह्यो र कलिमा यस पुरीलाई नैपालिका पुरी भनिन्छ ॥६४॥ त्यसै पुरीको पूर्वपट्टिको तल्लो भागबाट सम्पूर्ण नदीहरूमा श्रेष्ठ भएकी र सम्पूर्ण कामना पूर्ण गर्ने शिवगङ्गा नाम गरेकी नदी बगेकी छिन् ॥६३-६५॥

स्वर्गसमान उत्तरकाशी अर्को कुनै यस पृथ्वीमा छैन। यो उत्तरकाशी धर्म, अर्थ, काम एवं मोक्षनामक चारै पुरुषार्थ वा चतुर्वर्ग प्रदान गर्ने पृथ्वीमा रहेको अमरालय हो। जसले पाशुपती नगरीको माहात्म्य भक्तिपूर्वक सुन्छ त्यो व्यक्ति सम्पूर्ण पापबाट मुक्त भएर शिवलोक जान्छ ॥६६-६७॥

अत्यन्त पुण्यदायिनी शैवालले सुहाएकी वाग्मती नदी तरङ्गले युक्त भएकी छन्। देवता, राक्षस र मानिसहरूले यिनको श्रद्धासाथ सेवा गर्छन् र यिनले सम्पूर्ण पापबाट मुक्त गराउँछिन् ॥६८॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा पाशुपतीपुरीको माहात्म्यनामक बहत्तरौं अध्याय पूरा भयो।

---

२१. तेजसां पुञ्जलिङ्गोऽयम् इति न.सं.पु.पाठः।
२२. तस्याः प्राच्यामधोभागे शिवगङ्गा उवाह सा, इति न.सं.पु.पाठः
२३. समा स्वर्गम् इति न.सं.पु.पाठः।

# त्रिसप्ततितमोऽध्यायः

## नेपालक्षेत्रस्य महिमा

अगस्त्य उवाच

निशम्य भूमन् तव वक्त्रपुष्करात् प्रनिःसृतां दुर्लभभारतीं[1] शुभाम्।
तपोऽमरावाससुधाप्रसंशनं विनोदयामो हिमशैलहेतुकम् ॥१॥
मुक्तो नरः को वद शङ्करात्मन् क्षेत्रे हि नेपाल इति प्रसिद्धे[2]।
भर्त्तुः पशूनामधिराज्यरूपे विनाशबीजेऽखिलकिल्विषाणाम्[3] ॥२॥

लोमहर्षण उवाच

यद्वदति स्म सेनानीर्भक्ताय[4] घटयोनये। मत्तः शृणुत तत्सर्वं वक्ष्यमाणं शुभोदितम् ॥३॥

स्कन्द उवाच

आसीत्पूर्वं महाराजो देवीदास इति श्रुतः। उत्कलाख्ये पुरे दिव्ये दानधर्मार्चने रतः ॥४॥
सन्त्यज्य तृणवद्राज्यं स्थापयँस्तत्र सूनुकम्। कञ्चिद्यतिं समालम्ब्य हिमवद्भूधरं ययौ ॥५॥
ब्रह्मपुत्रजले स्नात्वा[5] तेपे नीलाचले वसन्। भक्त्या सम्पूज्य कामाख्यां निर्जनोऽहर्निशं जपी ॥६॥
द्वादशाब्दं तपस्यन्तं[6] सिद्धदेहं निरापदम्। ददर्श स्नातकन्तत्र पूजयन्तं महेश्वरीम् ॥७॥
प्रणम्य शिरसा दान्तो जैगीषव्यो यतीश्वरः[7]। कुशलं परिपृच्छन्तं[8] प्रोवाच नृपतिं द्विजः ॥८॥

---

अध्याय - ७३

## नेपालक्षेत्रको महिमा

अगस्त्य मुनिले भन्नुभयो - हे प्रभु ! हजुरका मुखारविन्दबाट निस्केको स्वर्गको अमृतजस्तो कल्याणमय वाणी सुनेर हिमालय पर्वतमा गरेको तपस्याबाट प्राप्त हुने आनन्दजस्तै आनन्द प्राप्त भएको छ ॥१॥ हे कार्तिक स्वामी ! प्राणीहरूका सम्पूर्ण पापहरूको विनाशकको मूल कारण भएको पवित्र पशुपतिको राज्य नेपाल नाम गरेको प्रसिद्ध क्षेत्रमा को व्यक्ति मुक्त भयो ? मलाई बताउनुहोस् ॥१-२॥

लोमहर्षणले भन्नुभयो - त्यसपछि कार्तिक स्वामीले भक्त अगस्त्य मुनिलाई जे भन्नुभयो, त्यो कल्याणमय वचन म सबै बताउँछु, सुन्नुहोस् ॥३॥

कार्तिक स्वामीले भन्नुभयो - अघि सुन्दर उत्कल नाम गरेको शहरमा सधैं दान, धर्म र पूजा गर्ने देवीदास नामका राजा थिए। राज्यलाई तृण बराबर ठानेर त्यस राज्यमा आफ्नो छोरालाई राजगद्दीमा स्थापित गराई कुनै जोगीका साथमा लागेर ती राजा हिमालय पर्वतमा गए। उनी ब्रह्मपुत्रको जलमा स्नान गरेर नीलपर्वतमा बसी भक्तिपूर्वक कामाख्या देवीको पूजा गर्दै एकान्तमा रातदिन जप गरेर तपस्या गर्न थाले। ब्रह्मपुत्रको जलमा स्नान गरी शरीरका अधिव्याधिबाट मुक्त हुँदै सिद्ध शरीर लिएर बाह्र वर्षसम्म त्यस ठाउँमा तपस्या गरेका राजा देवीदासले महेश्वरीको पूजा गरिरहेका कुनै तपस्वीलाई देखे। शिर झुकाएर नमस्कार गर्दै कुशल प्रश्न गर्ने ती संयमी राजालाई योगीश्वर जैगीषव्यले भन्नलागे ॥४-८॥

---

१. प्रनिःसृताऽनूपमभारतीम् इति न.सं.पु.पाठः।
२. नेपालमहत्तरार्ये इति न.सं.पु.पाठः।
३. निर्वाणबीजेऽसुहृद्भवानाम् इति न.सं.पु.पाठः।
४. सेनानी भक्तिने इति न.सं.पु.पाठः।
५. ब्रह्मपुत्रजलाप्लाव्य इति न.सं.पु.पाठः।
६. तपस्विनम् इति न.सं.पु.पाठः।
७. च योगिराद् इति न.सं.पु.पाठः।
८. पृच्छमानं तम् इति न.सं.पु.पाठः।

जैगीषव्य उवाच

राजँस्ते शृणु वक्ष्यामि यत्ते श्रवणमागतम्। तीर्थराजेऽनिशं स्नात्वा ब्रह्मलोकं गतोऽस्म्यहम् ॥९॥
प्रणम्य द्रुहिणं विष्णुं लोकान् सप्त विलोकयन्[९]। तद्वृत्तान्तं समाहृत्य भुनज्मि स्म गृहेऽशनम्[१०] ॥१०॥
जपन् तं परमं चाऽस्मि सेव्यमानं सनातनैः। एवमेव महाराज मम धर्मः सनातनः[११] ॥११॥

राजोवाच

साधु ब्रह्मन् महाप्राज्ञ ईदृक्ते तपसः फलम्। अहो ह्यत्यद्भुतं कर्म चेदृग्धर्मस्तपस्विनः ॥१२॥
सौभाग्यमद्यैव यतो महन्मे प्रत्यक्षमत्रेक्षणगोचरं यत्।
आभाषणेनाऽप्रतिमेन सार्द्धं दृष्टं स्वरूपं सदसत्परं यत्[१२] ॥१३॥

जैगीषव्य उवाच

मा मैवं तात वक्तव्यं भवता धीमता कदा। योगीश्वरो हि साक्षात्त्वं देवीपुत्रः शिवात्मकः ॥१४॥
दिव्यचक्षुषि ते दत्ते जगदम्बिकयाऽऽर्यया। विद्धि राजन्नृतं देव्याः सिद्धमन्त्रकलेवरः ॥१५॥
अयं योगीश्वरो ज्ञेयो[१३] यतिरूपेण ते सखा। मन्वन्तराणि सर्वाणि जीवन्नस्ति निरन्तरम् ॥१६॥
केरलेशो महाराजस्तपस्वी त्वादृशो महान्। नेपाले येन सत्तीर्थे[१४] पशुपतिः समर्च्चितः ॥१७॥
एकादश समा यावत् समाराधितवान् हरम्। तस्माच्छैवी तनुर्लब्धा सिद्धक्षेत्रप्रसादतः ॥१८॥

जैगीषव्य उवाच

राजन् योगीश्वरो वर्णी विष्णुभक्तो महातपाः। सहस्रयुगजीवी च दोलाद्रावार्चयद् हरिम्[१५] ॥१९॥
तस्माल्लब्धवरो दान्तो योगीश्वरोऽच्युतात्मकः। यदुक्तं धीरवर्येण[१६] तत्सर्वं तथ्यसम्भवम् ॥२०॥

---

जैगीषव्यले भने – हे राजन् ! मेरो विषयमा तपाईंको कानमा जे पर्‍यो, त्यो कुरा सबै सुन्नुहोस्, म भन्छु। म यस तीर्थराजमा बारम्बार स्नान गरेर एकपटक ब्रह्मलोक गएको छु। ब्रह्मा र विष्णुको दर्शन गरेर सातै लोक हेर्दै त्यहाँको सबै वृत्तान्त लिएर घरमा आएँ र भोजन गरेँ। हे महाराज ! सनातन रुद्रले सेवा गरिएको विश्वमा सबैभन्दा उत्कृष्ट पुरुषको जप गर्छु। मेरो सनातन धर्म भनेको यही हो ॥९–११॥

राजाले भने – ठूलो बुद्धि भएका हे ब्रह्मन् ! तपाईंलाई धन्यवाद छ, तपाईंले तपस्याको यति राम्रो फल पाउनुभएको रहेछ, तपाईंले अद्‌भुत काम गर्नुभएको रहेछ, तपस्वीको रूप लिएर हजुरले यस्तो धर्म गर्नुभएको रहेछ। आज मेरो ठूलो भाग्य रहेछ किनभने एकछिन भए पनि मैले हजुरको दर्शन गर्न पाएँ। हजुरसँग अनुपम कुराकानी गर्न पनि पाएँ। यसभन्दा उत्तम पूर्वार्जित पुण्य मेरो अरू के नै हुन सक्छ र ? ॥१२–१३॥

जैगीषव्यले भने – हे राजन् ! तपाईं जस्तो बुद्धि भएको मानिसले कहिल्यै पनि यस्तो भन्नुहुँदैन किनभने हजुर देवीका पुत्र साक्षात् शिवस्वरूप तथा योगीश्वर हुनुहुन्छ। पूजनीय भगवती जगदम्बिकाले तपाईंलाई दिव्यचक्षु दिनुभएको छ। हजुरको शरीरमा मन्त्र सिद्ध भइसकेको छ। हे राजन् ! यो कुरा तपाईं साँचो ठान्नुहोस्। यतिको रूप लिएको यस योगीश्वरलाई सारा मन्वन्तरमा सधैँ बाँचिरहने हजुरको साथी हो भनेर ठान्नुहोस्। हे महाराज ! तपाईंजस्तै ठूला तपस्वी केरल देशका राजाले नेपालको यस महाक्षेत्रमा आएर पशुपतिको पूजा गर्नुभयो। एघार वर्षसम्म भगवान् शङ्करको आराधना गरेर सिद्धक्षेत्रको प्रभावले शिवस्वरूप शरीर पाएका थिए ॥१४–१८॥

जैगीषव्यले भने – हे राजन् ! ठूला तपस्वी विष्णुका भक्त ब्रह्मचारी योगीश्वरले हजार वर्षसम्म बाँचेर यस दोलाद्रिमा भगवान् विष्णुको पूजा गरेका थिए। उहाँबाट वर प्राप्त गरेर इन्द्रियमाथि विजय गरी बस्ने योगीश्वर विष्णुस्वरूप हुन् भनेर हजुरले जुन कुरा भन्नुभयो, त्यो सबै कुरा साँचो हो, भएको कुरा हो ॥१९–२०॥

---

९. सम्पश्यन् सप्तलोककम् इति न.सं.पु.पाठः।
१०. स्वगृहे बुभुजेऽशनम् इति न.सं.पु.पाठः।
११. एतद्धर्मं सनातनम् इति न.सं.पु.पाठः।
१२. दिष्टं ब्रूमः किं सदतः परञ्च इति न.सं.पु.पाठः।
१३. विद्धि इति न.सं.पु.पाठः।
१४. नेपालेऽसौ महाक्षेत्रे इति न.सं.पु.पाठः।
१५. सहस्राणि युगं जीवी दोलाद्रौ पूजितो हरि इति न.सं.पु.पाठः।
१६. धीरवीरेण इति न.सं.पु.पाठः।

राजोवाच

सिद्धक्षेत्रं महापीठं यत्रास्ते पशुपेश्वरः। नेपालाख्यं हि मां तत्र सिद्धयोगीश नीयताम् ॥२१॥
मनः प्रोज्जृम्भते मे तत् क्षेत्रं द्रष्टुं मुदा[१७] प्रभो। धाम माहेश्वरं पुण्यं कामसिद्धिप्रदं परम् ॥२२॥

स्कन्द उवाच

आकर्ण्य वचनं सद्यो योगीश्वरो हि योगिनः। प्रणम्य शिरसा देवीं गन्तुञ्चाऽप्रार्थयन् मुदा ॥२३॥
योगिनः प्रययुस्तूर्णं द्रष्टुं तद् नीलपर्वतात्[१८]। सिद्धक्षेत्रं क्षणाद् व्योम्नः प्राप्तवन्तो मणिह्रदम् ॥२४॥
ददृशुर्योगिनः क्षेत्रं सर्वं विष्णुमयं जगत्। लिङ्गमयं धराशैलं व्याप्तं देव्याः कलेवरैः ॥२५॥
प्रणेमुर्दण्डवत् क्षेत्रं पाशुपतं हि योगिनः। तुष्टुवुः प्रेक्ष्य संभक्त्या यद्यदृष्टञ्च भावतः[१९] ॥२६॥

योगिन ऊचुः

विष्णोऽच्युत हरे शौरे रुद्र स्थाणो भवेश्वर। दुर्गे गौरि शिवे कालि नमोऽस्तु तेऽभिपाहि माम् ॥२७॥
सर्वैनःप्रहणोपेन्द्र पापमृत्युहरेश्वर। मृत्यूद्भवहरे देवि नमोऽस्तु ते नमो नमः ॥२८॥
नमः स्थित्युद्भवेशाय नमः संसारहारिणे। सृष्टिस्थितिविनाशिन्यै चेच्छाशक्त्यै नमोऽस्तु ते ॥२९॥
मनोरूपाय कृष्णाय बुद्धिरूपाय शूलिने। शर्वाण्यै ज्ञानरूपिण्यै नमो नमोऽस्तु तेऽनिशम् ॥३०॥
जगद्व्याप्तात्मनेऽजाय लिङ्गव्याप्तत्र्यगात्मने। जगद्व्याप्तस्वरूपायै नतोऽस्मि तेऽनिशं नमः ॥३१॥
पराय पद्मनाभाय परमेशाय शम्भवे। परापरप्रतीतायै प्रणमामि नतोऽस्म्यहम् ॥३२॥
विष्णवेऽनन्तरूपाय रुद्राय बहुमूर्त्तये। आर्यायै बहुरूपायै वाग्घृदङ्गैर्नमो नमः ॥३३॥

---

राजा देवीदासले भने– हे सिद्धयोगीश्वर ! नेपाल सिद्धक्षेत्र हो। त्यहाँ पशुपतिनाथ बस्नुहुन्छ। हे सिद्धयोगी ! मलाई त्यहाँ लैजानुहोस्। हे प्रभु ! सम्पूर्ण कामना सिद्ध गर्ने त्यो महेश्वरको लौकिक क्षेत्रको दर्शनका लागि मेरो मन लालायित भएको छ ॥२१–२२॥

कार्तिक स्वामीले भन्नुभयो – योगीश्वरले योगी राजाको यो कुरा सुनेर कामाख्या देवीलाई प्रणाम गरी त्यहाँ जानका लागि हर्षपूर्वक आज्ञा मागे। जैगीषव्य राजाका मित्र योगी र स्वयं योगी राजा यी तीनजना नीलाचलबाट सिद्धक्षेत्र अर्थात् नेपाल देखाउनका लागि तुरुन्त प्रस्थान गरी आकाशमार्गबाट तुरुन्त नै मणिह्रदमा आए। योगीहरूले सबै धरातललाई विष्णुमय र लिङ्गमय क्षेत्रका रूपमा देखे। साथै दैवी नै देवीका शरीरले ढाकिएको त्यस क्षेत्रको दर्शन गरे। त्यस पाशुपतक्षेत्रलाई दण्डवत् नमस्कार गर्दै भावले नदेखेको कुरालाई पनि भक्तिले सम्झिएर स्तुति गर्न थाले ॥२३–२६॥

योगीहरूले भने – हे विष्णु ! हे अच्युत ! हे हरि! हे शौरी ! हे स्थाणु ! हे भव ! हे ईश्वर ! हे दुर्गे ! हे गौरी ! हे शिवे ! हे काली ! तपाईंहरूलाई नमस्कार छ, हाम्रो रक्षा गर्नुहोस्। सम्पूर्ण अपराधलाई नाश गर्ने हे उपेन्द्र ! पाप र मृत्युलाई हरण गर्ने हे ईश्वर ! मृत्युको उत्पत्तिलाई विनाश गर्ने हे देवी ! हजुरहरूलाई बारम्बार नमस्कार छ। संसारको पालन र उत्पत्तिका स्वामीलाई नमस्कार छ। संसारको तापलाई हरण गर्ने ईश्वरलाई नमस्कार छ। सृष्टि, स्थिति र विनाश तीनै का मगर्ने इच्छाशक्ति भएका हजुरलाई नमस्कार छ ॥२७–२९॥

मनोरूप कृष्णलाई, बुद्धिरूप शङ्करलाई र ज्ञानरूप लिने शर्वाणी हजुरलाई बारम्बार नमस्कार छ। जगद्व्याप्तिस्वरूप अजन्मा भगवान् विष्णुलाई, लिङ्गमा व्याप्त भएर रहेका त्र्यक्स्वरूप भगवान् शङ्करलाई र जगत्लाई व्याप्त गरेर रहने शक्तिलाई म नमस्कार गर्छु, हजुरलाई बारम्बार नमस्कार छ। उत्कृष्ट पद्मनाभलाई, परमेश्वर शङ्करलाई, पर तथा अपर लोकमा प्रसिद्ध परमेश्वरीलाई म नमस्कार गर्छु। अनन्तस्वरूप लिने विष्णु, अनेक मूर्ति लिने रुद्र र नानारूपधारिणी भगवतीलाई हामी मन, वचन र शरीरले बारम्बार नमस्कार गर्दछौं ॥३०–३३॥

---

१७. च तत्क्षेत्रं दर्शितुम्, इति न.सं.पु.पाठः।
१८. नीलाचलात्प्रदर्शितुम् इति न.सं.पु.पाठः।
१९. भापत इति न.सं.पु.पाठः।

शङ्खचक्रगदापद्मैः शूलादिभिस्तथायुधैः। खड्गचर्माङ्कुशैश्चाऽन्यैर्विषमे पातु मां शिवे ॥३४॥
यो ब्रूयाद् भक्तितः स्तोत्रं पुरतः सततं बुधः। हरेर्देव्याः सदाशम्भोः सर्वपापैर्विवर्जितः ॥३५॥
रक्षन्ति देवतास्तं वै विपत्तौ विषमेऽशुभे। ग्रहभूतपिशाचार्त्तञ्चान्ते ब्रह्मपदं व्रजेत् ॥३६॥

जैगीषव्य उवाच

पश्य राजन् महायोगिन् विष्णुमयमिदं जगत्। नेपालं यद्धरेः क्षेत्रं व्याप्तं विष्णुकलेवरैः ॥३७॥

योगीश उवाच

पश्य पाशुपतं क्षेत्रं तल्लिङ्गैः परिपूरितम्। न पश्याम्यार्य ताताऽन्यं केवलं तन्मयं जगत् ॥३८॥

राजोवाच

पश्यन्तु योगिनः[२०] क्षेत्रं व्याप्तं देव्याः स्वविग्रहैः। केवलं योगिनीवृन्दैराच्छादितं धराचलम् ॥३९॥

स्कन्द उवाच

एवं सम्भाषणे कूटे मिथो मुनीशयोगिनाम्। वायुस्तत्र समागत्य चाऽब्रवीत्कर्णतर्पणम् ॥४०॥

वायुरुवाच

वज्राख्यां योगिनीं वन्द्यां सङ्गत्य विमलेश्वरम्। विमलाम्बुस्थले स्नात्वा तौ[२१] समर्चयतां सुताः ॥४१॥
एतत्सर्वं ततः शैलाद् विलोकयिष्यथ[२२] योगिनः। हरप्रियां समभ्यर्च्य पशुभर्तारमर्च्चय ॥४२॥

---

हे शिवा ! शङ्ख, चक्र, गदा, पद्म तथा शूल आदि हतियार एवं अरू खड्ग, चर्म, अङ्कुश आदिले सङ्कट परेको बेलामा मेरो रक्षा गर्नुहोस्। जसले विष्णु, देवी र शम्भुका अगाडि यो स्तोत्र भक्तिपूर्वक उच्चारण गर्छ, त्यो व्यक्ति सम्पूर्ण पापबाट मुक्त हुन्छ। ग्रह, भूत र पिशाचले सताएको व्यक्तिलाई आपत्ति, सङ्कट र अप्ठ्यारो परेको बेलामा देवताहरूले रक्षा गर्छन्, अन्त्यमा त्यस व्यक्तिले ब्रह्मपद पाउँछ ॥३४–३६॥

जैगीषव्यले भन्नुभयो – हे महायोगी ! हे राजन् ! यो सम्पूर्ण जगत् विष्णुमय छ। यस क्षेत्रलाई विष्णुको शरीरले ढाकेको छ। त्यसैले नेपाललाई विष्णुक्षेत्र भनिन्छ ॥३७॥

राजाका साथी योगीले भने – यो पाशुपतक्षेत्र शङ्करको लिङ्गले परिपूर्ण छ। हे आर्य ! यहाँ म अरू केही पनि देख्दिनँ, केवल शङ्करमय जगत् देख्छु, हेर्नुहोस् ॥३८॥

राजाले भने – हे योगीश्वर ! हेर्नुस् त, यो क्षेत्र त खालि देवीका शरीर र योगिनीहरूले ढाकेको छ ॥३९॥

कार्तिक स्वामीले भन्नुभयो – यसरी योगीश्वरहरू र राजाका परस्परमा कुराकानी भइरहेको बेलामा वायुदेवताले त्यहाँ आएर कानलाई तृप्त गराउने बोली बोल्नुभयो ॥४०॥

वायुले भन्नुभयो – हे छोरा हो ! वज्रयोगिनीलाई नमस्कार गरेर विमला नदीको जलमा स्नान गरी विमलेश्वरको पूजा र दर्शन गर। हे योगी हो ! त्यसपछि शिवप्रिया पार्वतीको पूजा गरेर भगवान् पशुपतिनाथको पूजा गर, अनि यो सबै वास्तविक कुरा यसै पर्वतबाट देख्न सक्नेछौ ॥४१–४२॥

---

२०. पश्य योगीश्वरा इति न.सं.पु.पाठः। २१. विमलाम्बुजलाप्लाव्य तम् इति न.सं.पु.पाठः।
२२. शैलात्प्रदर्शिष्यथ इति न.सं.पु.पाठः।

स्कन्द उवाच

भर्तुर्वाक्यामृतं पीत्वा जग्मुर्यत्र स ईश्वरः[२३] । पौषकृष्णनवम्यां ते स्नात्वेशमार्चयन्मुदा ॥४३॥
ददृशुर्योगिनः क्षेत्रं सर्वं विष्णुमयं मुने । शङ्खचक्रगदापद्मस्वायुधाम्बरभूषणैः ॥४४॥
विभूषितान् हरीन् व्याप्तान् रसाशैलतले बहून् । क्वचिद्भक्तैर्मुदा विष्णुं पूजितमर्हणैर्ध्रुवम् ॥४५॥
तेभ्यः प्रवरदं कञ्चिल्लक्ष्म्या समं मुदाश्रितम् । ददृशुर्योगिनः कञ्चित्स्तूयमानं सुरासुरैः ॥४६॥
भूषयन्तञ्च भक्तांश्च प्रेरयन्तं परानपि[२४] । ददृशुर्योगिनः क्षेत्रे सायुज्यपदवीं हरेः ॥४७॥
आयुधैर्भूषणैः सर्वैः प्राप्तान्विभूषितान्नरान् । सायुज्यपदवीं केचिद् ददृशुस्ते हरेस्तनौ ॥४८॥
विविशुः तत्र ते भक्ता[२५] ज्योतिस्तेजसि तद्यथा । तत्क्षणे ददृशुः क्षेत्रं लिङ्गरूपं[२६] रसाचलम् ॥४९॥
शैवैः प्रपूजितान् रुद्रान् भक्त्या पञ्चोपचारकैः । केचिद्रुद्रावतारान्ते भक्तेभ्यो वरदान् हरान् ॥५०॥
आयुधालङ्कृतान् पूर्णान् ददृशुर्भक्तवत्सलान् । क्वचित्प्रस्थापयन्तं तान्[२७] यानैर्भक्तान् स्वपत्तनम् ॥५१॥
व्योम्नि विभूषितान् कांश्चिदायुधैर्भूषणैर्हरान् । सदृशान् ददृशुः कांश्चित् स्वभक्तान् शूलिनो हि ते ॥५२॥
त्र्यक्ष्यैर्जटायुधैर्वाहैर्विभूषितांश्चैव योगिनः । भक्तानां विविशू रुद्रे तेजांस्यसुविमोचने[२८] ॥५३॥
ददृशुस्तद्धि सायुज्यं तथैवं योगिनः पुनः । अपश्यन् योगिनः क्षेत्रे पशुपतेर्धराधरान् ॥५४॥
दुर्गामयीः पुनः सर्वाः भूषणायुधभूषिताः । सायुज्यपदवीं भक्तान् प्रापयन्तीः सदा हि तान् ॥५५॥

---

कार्तिक स्वामीले भन्नुभयो – वायुदेवको अमृतरूपी अमृत पिएर तिनीहरू त्यहाँ गए, जहाँ भगवान् ईश्वर हुनुहुन्थ्यो । उनीहरूले पौष कृष्ण नवमीका दिन स्नान गरी हर्षपूर्वक ईश्वरको पूजा गरे । हे अगस्त्य मुनि ! ती योगीहरूले सम्पूर्ण क्षेत्रलाई विष्णुमय देखे । शङ्ख, चक्र, गदा, पद्म, हतियार र वस्त्र तथा भूषणले युक्त भएका विष्णुले अलङ्कृत भएको पृथ्वीको धरातललाई उनीहरूले देखे । त्यहाँ भक्तहरूले कतै पूजासामग्री लिएर विष्णुको पूजा गरिरहेका थिए ॥४३–४५॥

कुनै योगीले भक्तहरूलाई वर दिन लागेका, लक्ष्मीसित आनन्दपूर्वक विराजमान भएका र कुनैले देवताहरूद्वारा स्तुति गरिएका विष्णुलाई देखे । कसैले आफ्ना हतियारहरूद्वारा भक्तलाई सिँगार्न लागेका, कसैले यानमा भक्तलाई चढाउन लागेका विष्णुलाई देखे भने कसैले विष्णुको मोक्षपदवीलाई देखे । कसैले सम्पूर्ण शस्त्र र अलङ्कारहरूले विभूषित भएर सायुज्य पदवी प्राप्त गर्न लागेका मानिसहरूलाई भगवान् विष्णुको शरीरमा देखे । ज्योतिर्मय तेजमा अचानक भक्तहरू प्रवेश गरेको देखेपछि उनीहरूले त्यहाँको सारा पृथ्वी र पर्वतलाई लिङ्गमय क्षेत्रका रूपमा देख्न थाले ॥४६–४९॥

कसैले भक्तिपूर्वक पञ्चोपचारले शिवभक्तहरूद्वारा पूजित रुद्रलाई देखे भने कसैले रुद्रावतारको अन्त्यमा भक्तहरूलाई वर दिन लागेका महादेवका अवतारहरूलाई देखे । कतै उनीहरूले भक्तवत्सल तथा हातहतियारले सुसज्जित शिवलाई देखे भने कतै विमानद्वारा भक्तहरूलाई आफ्नो शहरमा पठाउन लागेका रुद्रहरूलाई देखे । कुनै योगीहरूले आकाशमा शस्त्र र अलङ्कारद्वारा सुसज्जित शङ्करतुल्य ती रुद्रहरूलाई देखे भने कुनैले शिवजीतुल्य आफ्ना भक्तहरूलाई देखे ॥५०–५२॥

तीन आँखा, जटा, अस्त्र र वाहनले विभूषित भएका योगीहरू प्राण त्याग गर्नका लागि रौद्र तेजमा प्रवेश गर्न लागेको उनीहरूले देखे । ती योगीहरूले मुक्तिको स्वरूपलाई देखे । फेरि उनीहरूले पाशुपतक्षेत्रमा रहेका योगीहरूलाई देखे । त्यसपछि योगीहरूले सम्पूर्ण धरातल आफ्ना भक्तहरूलाई मुक्ति दिलाउन लागेकी, विभिन्न अलङ्कार र शस्त्रद्वारा सुसज्जित दुर्गाका रूपहरू देखे ॥५३–५५॥

---

२३. तमीश्वर इति न.सं.पु.पाठः ।
२४. स्वायुधैर्भूषयन् भक्तान् याने प्रस्थापयन् परम् इति न.सं.पु.पाठः ।
२५. सहसा भक्तान् इति न.सं.पु.पाठः ।
२६. लिङ्गमयम् इति न.सं.पु.पाठः ।
२७. क्वचित्प्रस्थापयं तं ते इति न.सं.पु.पाठः ।
२८. विविशूर्भक्तिनो रुद्रे तेजस्यसूविमोचने इति न.सं.पु.पाठः ।

खड्गचर्माङ्कुशैः पाशैर्भूषितां भक्तवत्सलाम् । ददृशुर्योगिनः केचित् महिषासुरघातिनीम् ॥५६॥
दुर्गाख्यमसुरं सङ्ख्ये प्रनिघ्नन्तीं वरोद्धतम् । प्रचण्डाख्यं महादैत्यमन्धकासुरमेव च ॥५७॥
विकटाख्यं महादैत्यं निशुम्भं शुम्भमेव च । अपश्यन्दीर्घकीर्तिञ्च त्रिलोकी येन कम्पिता[२९] ॥५८॥
विनिघ्नन्तीं त्रिशूलेन कांश्चित् खड्गेन सङ्गरे । घातिनीं सर्वतो दैत्यान् शङ्खपद्मादिसङ्ख्यया[३०] ॥५९॥
ब्रह्मेशलब्धकामांस्तान् तद्बलोद्धतकोपनान् । सुनृत्यद् योगिनीवृन्दं सर्वायुधविभूषितम्[३१] ॥६०॥
खादन्मांसं पिबद्रक्तं ददृशुयोगिनस्तदा[३२] । अपश्यन्योगिनश्चैव हतदेहान् हि दानवान् ॥६१॥
तेजांसि विविशुर्देव्यां दीपे दीपशिखा इव । चित्रात्मान इति प्रेक्ष्य चाऽभूवन् योगिनस्तदा ॥६२॥
प्रचक्रिरे स्वकं स्थानं क्षेत्रं प्रणम्य तन्मयम् । निवेदितुं हि तद्वार्त्ताः द्वीपेषु ब्रह्मणो मुने ॥६३॥
योगेन योगिनस्तस्माद् गन्तुमुत्पेतुराशु ते । तदैवाशक्नुवन्नैव प्रोच्चलितुं हि योगिनः ॥६४॥
चित्रात्मानो हि संस्मेरुर्जगत्प्राणञ्च तत्क्षणे । सदात्मा जगतां वायुरब्रवीत् तर्पयन् श्रुतिम्[३३] ॥६५॥
अप्रणम्य गता भूमिं रत्नयुक्ताञ्च[३४] नेमुनिम् । ततो विघ्नान्विता यूयं देहशक्त्या विवर्जिताः[३५] ॥६६॥
तस्मात् प्रणम्य योगीशा गच्छन्तु पशुपेश्वरम् । विघ्नेशं प्रथमं नत्वा[३६] क्षेत्रपालं गणान् पृथक् ॥६७॥
प्रणम्य वासुकिं प्रार्थ्य परं विघ्नविनाशकम् । शृङ्गोदके वरे स्नात्वा पशुभर्तारमर्चय ॥६८॥
मङ्गलां वत्सलां गौरीं गुह्याख्याञ्च महेश्वरीम् । आकर्ण्य वचनं वायोस्तथात्मानो हि योगिनः ॥६९॥
प्रययुः सहसा सिद्धा यत्र वज्रेश्वरो गिरिः । भक्त्या नेमुर्महेशानीमादिशक्तिञ्च दण्डवत् ॥७०॥
परिक्रम्य मुदा सिद्धा प्रतुष्टुवुर्मुहुर्मुहुः ।

---

कुनै योगीले खड्ग, चर्म, अङ्कुश र पासोले सुसज्जित, भक्तप्रिय, महिषासुरघातिनी दुर्गालाई देखे । वरले उन्मत्त भएको दुर्ग नाम गरेको दैत्यलाई लडाईंमा मार्न लागेको भगवतीलाई कसैले देखे भने कसैले प्रचण्ड र अन्धकासुर दैत्यलाई मार्न लागेकी भगवतीलाई देखे । कसैले विकट, शुम्भ, निशुम्भ र तीनै लोक थर्काउने महासुरलाई मार्न लागेकी भगवतीलाई देखे । युद्धमा शङ्ख एवं पद्म हातमा लिएर दैत्यहरूमध्ये कसैलाई त्रिशूलले हानेर, कसैलाई तरवारले हानेर एक–एक गरी मार्न लागेकी भगवतीलाई देखे ॥५६ –५९॥

ब्रह्मा र शङ्करबाट वर पाएर उन्मत्त भएका क्रोधी दैत्यहरूमाथि जाइलाग्न सम्पूर्ण आयुधले सुसज्जित भएर योगिनीहरू नाँच्न लागेका योगिनीहरूले देखे । मासु खाँदै, रगत पिउँदै, तरवार प्रहार गरिरहेका शरीर त्याग गरेका दैत्यहरूलाई योगीहरूले देखे । तेज निस्किएर एउटा बत्तीको ज्वाला अर्को ज्वालामा प्रवेश गरेभैँ देवीमा प्रवेश गरेको देखेर योगीहरू छक्क परे ॥६०–६२॥

त्यस्तो देवीमय क्षेत्रलाई नमस्कार गरेर त्यो कुरा अरू द्वीपका ब्रह्मालाई निवेदन गर्नका लागि आ–आफ्नो स्थानबाट जान तिनीहरू तयार थिए । जब ती योगीहरू त्यस ठाउँबाट अन्यत्र जाने इच्छाले उड्न खोजेका थिए, चल्नै सकेनन् । त्यसपछि उनीहरूले संसारका प्राण भएका वायुदेवलाई स्मरण गरे । त्यो कुरा सुनेर योगीहरूलाई उहाँले भन्नुभयो – हे योगी हो ! रत्नमय स्थान र नेमुनिलाई नमस्कार नगरी तिमीहरू हिँड्यौ । त्यसैले गर्दा विघ्न पर्‍यो, तिमीहरूको शरीर शक्तिहीन भयो ॥६५–६६॥

त्यसैले हे योगी हो ! सर्वप्रथम नेमुनिलाई नमस्कार गरेर विघ्नराज गणेश, क्षेत्रपाल र शिवगणलाई अलग–अलग प्रणाम गरी पशुपतिमा जाओ । हाम्रो विघ्न नाश होस् भनेर प्रार्थना गर्दै वासुकिलाई नमस्कार गरेर उत्तम तीर्थ शृङ्गोदकमा स्नान गरी पशुपतिनाथको पूजा गर । मङ्गला गौरी, वत्सला गौरी र गुह्य गौरीको दर्शन गर । वायुको यो कुरा सुनेर ती योगीहरू वज्रेश्वरी पर्वतमा गए र भक्तिपूर्वक आदिशक्ति महेश्वरीलाई दण्डवत् प्रणाम गरे । वरिपरि परिक्रमा गरेर सिद्ध ती योगीहरूले बारम्बार भगवतीको स्तुति गरे ॥६७–७०½॥

---

२९. येन त्रिलोककम्पितम् इति न.सं.पु.पाठः ।
३०. शङ्खपद्मान् हि इति न.सं.पु.पाठः ।
३१. ननृतर्योगिनीवृन्दाः सर्वायुधविभूषिता इति न.सं.पु.पाठः ।
३२. खादन्मांसानसृक् पीत्वा चासिप्रहरदेहिन इति न.सं.पु.पाठः ।
३३. कर्णतर्पणम् इति न.सं.पु.पाठः ।
३४. यूयं रत्नमयीञ्च इति न.सं.पु.पाठः ।
३५. देहाः शक्तिविवर्जिता हि व इति न.सं.पु.पाठः ।
३६. प्रणमन्नादौ इति न.सं.पु.पाठः ।

योगिनः ऊचुः

ॐ मातर्देवि नमस्तुभ्यं जगद्वन्द्ये हरिप्रिये ॥७१॥

त्रैलोक्यमोहिनीशानि सर्वदुष्कृतनाशिनि। परापरस्वरूपायै[३७] ब्रह्मरूपिणि ते नमः ॥७२॥

सृष्टिस्थितिविनाशानां स्वात्मेच्छाहेतुतां गते[३८]। स्तुत्वैवं योगिनीं वक्त्राद् ददृशुस्तद्‌गिरिं वरम् ॥७३॥

वज्रमयं सुवर्णाढ्यं सप्तर्षीन् नेमुनिन्ततः। चित्रात्मानो गणान् सिद्धान् प्राणमन् स्थगितायनाः ॥७४॥

सत्कृत्य नेमुनिः सिद्धान् प्रोवाच गिरिसानुनि।

सिद्धर्षिरुवाच

नतिरस्तूभयेभ्योऽद्य योगिनः कुशलं हि वः ॥७५॥

एते हि योगिनः सिद्धाः सप्तर्षयस्तपस्विनः।

योगिन ऊचुः

नमो वो ब्रह्मपुत्रेभ्यः सिद्धर्षये नमो नमः ॥७६॥

वयमत्राऽऽगता द्रष्टुं तव क्षेत्रं परात्परम्। दैवात् तव प्रसादाच्च लब्धं क्षेत्रस्य दर्शनम्[३९] ॥७७॥

कथञ्च पशुपं गुह्यां द्रक्ष्यामो वद हे प्रभो[४०]।

स्कन्द उवाच

ओमिति च प्रतिश्रुत्य सिद्धर्षिः सहसा मुने ॥७८॥

आदिशक्तिं प्रणम्यार्य्यामगमद् योगिभिः समम्। परिभ्रम्य स्वकं क्षेत्रं तीर्थाम्बु स्पर्शयँश्च तान् ॥७९॥

---

योगीहरूले भने- हे जगद्वन्द्ये ! हे हरिप्रिये ! हे देवी ! हे त्रैलोक्यमोहिनी ! हे सबै पाप नाश गर्ने भगवती ! हजुरलाई नमस्कार छ। हे ब्रह्मरुपिणी ! परभन्दा पनि पर रहेकी भगवती हजुरलाई नमस्कार छ। सृष्टि, स्थिति र विनाश आफ्ना इच्छाअनुसार नै गर्न सक्ने हे भगवती ! हजुरलाई नमस्कार छ। यसरी योगीहरूको मुखबाट जगदम्बाको स्तुति भएपछि योगीहरूले वज्रमय सुवर्णले युक्त भएको उत्तम पर्वतलाई देखे। त्यसपछि सप्तर्षि र नारदलाई देखे। गतिहीन भएका र छक्क परेका ती योगीहरूले सिद्धगणहरूलाई नमस्कार गरे। नेमुनिले सिद्धहरूलाई त्यस पर्वतको टुकुरामा नेमुनिलाई सत्कार गरे र भने ॥७१–७४½॥

सिद्धर्षि नेमुनिले भने – तपाईंहरू दुबै थरीलाई प्रणाम छ, तपाईंहरू कुशलै त हुनुहुन्छ ? हे योगी हो ! तपाईंहरू सिद्ध तपस्वी सप्तर्षिसमान हुनुहुन्छ ॥७५½॥

योगीहरूले भने – ब्रह्माका पुत्र सिद्ध ऋषिहरूलाई बारम्बार नमस्कार छ। हामीहरू यहाँ सबैभन्दा उत्तम क्षेत्र हेर्न आएका छौँ। तपाईंको अनुग्रहबाट मैले यस क्षेत्रको दर्शन गर्ने सौभाग्य पाएँ। पशुपति र गुह्येश्वरीको दर्शन कसरी गर्न सकिएला ? हे प्रभु ! बताउनुहोस् ॥७६–७७½॥

कार्तिक स्वामीले भन्नुभयो– ती सिद्धर्षि नेमुनिले तुरुन्तै हुन्छ भनेर स्वीकार गरे अनि आदिशक्तिलाई नमस्कार गरेर योगीहरूका साथ हिँडे। आफ्नो क्षेत्रको भ्रमण गर्दै योगीहरूलाई तीर्थको जल स्पर्श गराउँदै लिङ्गहरूको दर्शन गर्दै माहेश्वर तीर्थमा गए ॥७८–७९॥

---

३७. परापरममात्रायै इति न.सं.पु.पाठः। ३८. स्वात्मेच्छहेतुभूतिनि इति न.सं.पु.पाठः।
३९. त्वत्प्रसादात्मया लब्धं क्षेत्रस्यैवास्य दर्शनम् इति न.सं.पु.पाठः। ४०. दर्शिष्यामो वद प्रभो इति न.सं.पु.पाठः।

प्रणमन् तानि लिङ्गानि माहेश्वरं ययौ ततः । संस्पृशन् शृङ्गतीर्थार्णं मृगांशं भृङ्गिनं ततः ॥८०॥
प्रणमति स्म तद्राज्यगणक्षेत्रञ्च नन्दिनम् । धर्मञ्च द्वारपालञ्च वासुकिञ्च पितामहम् ॥८१॥
भुवनेशीं शिवां दुर्गां गुह्येश्वरीं हरप्रियाम् । क्रमशो प्रणमन् सिद्धान् सिद्धाश्चाऽन्याश्च देवताः ॥८२॥
पशूनाञ्चैव भर्त्तारं ववन्दे क्रमशः किल[४१] । परिक्रम्य मुदा भक्त्या देवं त्रिभुवनेश्वरम् ॥८३॥
सेव्याय सेव्यमानाय सेव्यतोषाय ते नमः । देववन्द्याय रुद्राय देवानां पतये नमः ॥८४॥
तार‌रूपाय रुद्राय ताराय शेखराय ते । त्राणाय जगतां दुःखात्तारणाय नमोनमः ॥८५॥
घोरायाघोररूपाय घोरोत्पातविनाशिने । ईशानायेश्वरायाऽज ईशरूपाय ते नमः[४२] ॥८६॥
वन्देऽहं जगतां धाम जगज्जृम्भनहेतुकम् । जगतामालयं भूमन् जगज्जीवं जगद्गुरुम् ॥८७॥

स्कन्द उवाच

एवं स्तुत्वा शिवं भक्त्या परिक्रम्य हि योगिनः । मेनिरे तत्क्षणात्सिद्धाः कृतार्थाः स्वस्थविग्रहाः[४३] ॥८८॥
उषित्वैकां निशां तत्र पाशुपतेऽब्रवीद् द्विजः । सिद्धर्षये द्विजेशाय भक्त्या प्रणम्य गौरवात् ॥८९॥

जैगीषव्य उवाच

तात सनातनो धर्मो नैव त्याज्यो मनागपि[४४] । ब्रह्मलोकं हरेर्लोकं नित्यं यो गन्तुमिच्छति ॥९०॥
सप्तद्वीपानि पृथिव्याः[४५] कामाख्यानृपतिं पुनः । अनुज्ञामृतवर्षाद्यैः प्रसिच्यताञ्च[४६] नोऽधुना ॥९१॥
येन प्रेक्षामहे लोकैः[४७] सेव्यमानं निरन्तरम् । भवत्प्रसादतस्तात सिद्धदेवैः प्रपूजितम् ॥९२॥
प्रकृष्टं[४८] मोक्षदं क्षेत्रमशून्यं तिलमानतः ।

---

शृङ्गतीर्थको जल स्पर्श गराउँदै मृगांश, भृङ्गी र त्यस राज्यका गणक्षेत्रपाल नन्दीहरूको दर्शन गराए । धर्म, द्वारपाल, वासुकि, ब्रह्मा, भुवनेश्वरी, शिवा, दुर्गा, हरप्रिया, गुह्येश्वरी, सिद्धहरू र अरू देवताहरूको क्रमशः दर्शन गराउँदै भक्तिपूर्वक तीनै लोकका अधिपति भगवान् पशुपतिनाथको परिक्रमा गरेर दर्शन एवं वन्दना गरे ॥८०–८३॥

सेवा गर्न लायक र सेवा गरिरहेका तथा सेवक उपर सन्तुष्ट हुने भगवान्‌लाई नमस्कार छ । देवताका वन्दनीय र देवताका स्वामी रुद्रलाई नमस्कार छ । ब्रह्मस्वरूप, सबका पूज्य, विश्वको रक्षा गर्ने र दुःखबाट उतार्ने व्यापक रुद्रलाई नमस्कार छ । स्वयं भयानक एर पनि शिवरूप लिने तथा अशिवको उत्पत्ति हुन नदिने ब्रह्मासम्मको सृष्टि गर्ने ईश्वरस्वरूप ईशानलाई नमस्कार छ । हे भूमा ! संसारको सृष्टि, स्थिति र प्रलयका कारणस्वरूप भएका जगद्गुरु र सबैका आश्रय र प्राण भएका ईश्वरलाई नमस्कार छ ॥८४–८७॥

कार्तिक स्वामीले भन्नुभयो – ती सिद्धयोगीहरूले यसरी भक्तिपूर्वक शिवजीको परिक्रमा गरी स्तुति गरेर तुरुन्त नै आफ्नो शरीरलाई कृतार्थ तुल्याएको ठाने । पाशुपतक्षेत्रमा एक रात बसेर जैगीषव्य मुनिले ती ब्राह्मणदेव सिद्धर्षिलाई सम्मानका साथ भक्तिपूर्वक नमस्कार गरेर भने ॥८८–८९॥

जैगीषव्यले भने – हे राजन् ! ब्रह्मा र विष्णुको लोकमा जान चाहनेले सनातन धर्म कति पनि छोड्नु हुँदैन । हे राजन् ! फेरि सात द्वीप र कामाख्यामा पनि जानुपर्छ । त्यसैले स्वीकृतिरूपी अमृत वर्साएर अहिले मलाई सेचन गर्नुहोस् । जुन क्रियाले गर्दा तपाईंको अनुग्रह पाएर सिद्ध र देवताहरूले पूर्ण भएका र देवताहरूद्वारा सुसेवित लोकलाई देख्न पाउँला । मोक्ष दिने क्षेत्रलाई तिल बराबर पनि नछोडीकन हेरौँला ॥९०–९२॥

---

४१. क्रमशोऽवन्दयत्किल इति न.सं.पु.पाठः ।
४२. ईशित्वाय नमो नम इति न.सं.पु.पाठः ।
४३. कृतार्थिताः स्वविग्रहा इति न.सं.पु.पाठः ।
४४. तात सनातनं धर्मं नैव त्याज्यं मनागपि इति न.सं.पु.पाठः ।
४५. सप्तदीपान्तथा चास्य इति न.सं.पु.पाठः ।
४६. प्रसिञ्च्य ताञ्च इति न.सं.पु.पाठः ।
४७. लोकान् इति न.सं.पु.पाठः ।

सिद्धर्षिरुवाच

अलं वो गमनं तात तेषु शून्यपरेषु च ॥९३॥

यत्नो मोघो भवेत् गर्वस्त्यज्यतां हृदये भवम्[४९]। पश्य विप्रेश गोकर्णं यत्र तेपे दशाननः ॥९४॥

पश्य गरुडलिङ्गञ्च यत्र मोक्षं विलोकनात्। योगीश पश्य मत्क्षेत्रं दक्षावर्त्तेन च भ्रमन् ॥९५॥

पश्य राजन् पुरः पीठं यत्र वाञ्छा प्रलभ्यते।

स्कन्द उवाच

निशम्य वचनं तस्य ययुर्हरिगिरिं द्विजाः ॥९६॥

गरुडध्वजमद्राक्षीत् विष्णुलोकञ्च तन्मयम्। सेवितं विष्णुभक्तैस्तं विष्णुलाञ्छनलाञ्छितैः ॥९७॥

तल्लोके ये गुणाश्चाऽऽसन् ददर्श तान् गुणान् हि सः[५०]। अब्धिजया सरस्वत्या जयेन विजयेन च ॥९८॥

राजमानं समं विष्णुं ददर्श वज्रपीठके। प्रणम्य विधिवद् भक्त्या विष्णुलोकाचलं हरिम् ॥९९॥

ययौ गोकर्णदिवेशं यत्र ब्रह्मा ततापं सः। अद्राक्षीद् ब्रह्मलोकं स ब्रह्मभक्तैः प्रपूरितम् ॥१००॥

सावित्र्या तत्र गायत्र्या राजमानं विधिं समम्। यावन्तश्च गुणाः सन्ति ब्रह्मलोके सनातनाः[५१] ॥१०१॥

तावत्सर्वञ्च सोऽद्राक्षीत् निर्विशेषं मनागपि। भक्त्या प्रणम्य धातारं प्रत्याययौ हराश्रमम् ॥१०२॥

---

सिद्धर्षि नेमुनिले भने – हे योगी ती शून्य नगरीमा गएर केही पनि काम छैन, यो घमण्डलाई छोड। त्यहाँ जाने तिमीहरूको प्रयत्न सबै निष्फल हुनेछ ॥९३॥ हे विप्रेश ! जहाँ रावणले तपस्या गरेको थियो, त्यो गोकर्ण हेर। त्यहाँ गरुडलिङ्ग छ। त्यसको दर्शन गर्नाले मोक्ष प्राप्त हुन्छ ॥९४॥ हे योगीश्वर ! यो मेरो क्षेत्रलाई दायाँपट्टिबाट घुमेर हेर। यो अगाडिको पीठ पनि दर्शन गर। यसलाई दर्शन गर्नाले सबै मनःकामना पूर्ण हुन्छन् ॥९५॥

कार्तिक स्वामीले भन्नुभयो – उनको यो कुरा सुनेर ब्राह्मणहरू हरिगिरितर्फ गए। विष्णुका चिह्नले युक्त भएका भक्तहरूद्वारा सुहाएको विष्णुमय लोक र विष्णुलाई उनले देखे ॥९६–९७॥

विष्णुलोकमा जति पनि गुणहरू छन्, ती सबैलाई उनले देखे। लक्ष्मी, सरस्वती, जय, विजयले युक्त भएर मणिमय आसनमा विराजमान भएका विष्णुलाई उनले देखे। त्यसपछि विधिपूर्वक भक्तिका साथ हरिगिरि र हरिलाई प्रणाम गरे। त्यसपछि जहाँ ब्रह्माजीले तपस्या गर्नुभएको थियो, त्यसै गोकर्ण क्षेत्रमा उनी गए। अनि उनले ब्रह्माजीका भक्तहरूले परिपूर्ण भएको ब्रह्मलोकलाई देखे। गायत्री र सावित्रीका साथ विराजमान ब्रह्माजी र ब्रह्मलोकमा जति गुणहरू हुन सक्छन्, ती सबै कत्ति फरक नपर्ने गरी त्यहाँ रहेको उनले देखे। त्यसपछि भक्तिपूर्वक ब्रह्माजीलाई नमस्कार गरेर उनी हराश्रमतिर लागे ॥९८–१०२॥

---

४८. प्रदुष्टम् इति न.सं.पु.पाठः।

४९. मोघयत्ना भविष्यन्ति इदं गर्वमयं त्यज इति न.सं.पु.पाठः।

५०. यावद्गुणानि तल्लोके चापश्यत्तान् गुणान् हि स इति न.सं.पु.पाठः।

५१. सन्ति गुणानि यावन्ति ब्रह्मलोके च तानि तत् इति न.सं.पु.पाठः।

५२. यावत्सन्ति पदार्थानि इति न.सं.पु.पाठः।

परिभ्रम्य स तत्क्षेत्रं सप्तद्वीपानि सागरान्। अद्राक्षीत्तत्क्षणात् सिद्धः सर्वलोकं समन्ततः ॥१०३॥
यावन्तश्च पदार्थास्ते[५२] द्वीपेष्वब्धिषु सप्तसु। तानपश्यत् स तत्क्षेत्रे क्रमशश्च हिमालयम्[५३] ॥१०४॥
वाग्वतीं रत्नधाराञ्च वृद्धगङ्गाञ्च शृङ्गजाम्[५४]। प्रभावतीन्द्रमार्गाख्ये विष्णुपदीं महोदधीन्[५५] ॥१०५॥
अन्तरेषु च तासां स सप्तद्वीपानि कुम्भज। अद्राक्षीद् द्वीपसिन्धून् वै प्रत्यागमच्छिवाश्रमम् ॥१०६॥
अपश्यन्नृपतिस्तत्र पीठे कामेश्वरीं शिवाम्। सिद्धयोगिगणैर्देवै राजमानां समन्ततः ॥१०७॥
चतुःषष्टिगणैः सार्द्धं योगिनीनां समन्ततः। राजमानां महापीठे चाऽद्राक्षीत्स नृपेश्वरः ॥१०८॥
ब्रह्माच्युतेश्वरेन्द्राणां चूडामणिमरीचिभिः। रञ्जितपादपद्मांशां स्तुतिजप्योपहारकैः ॥१०९॥
सेविताञ्च सदा सिद्धैः योगिभिः खेचरैः स्त्रीभिः[५६]। तत्र ददर्श राजेन्द्रः कामाख्यां मणिमन्दिरे ॥११०॥
मुमुक्षूणाञ्च तेजांसि दाक्षायिण्यग्नितेजसि। अपश्यच्च विशन्ति स ज्वालाग्नौ शलभा इव ॥१११॥
एवं प्रेक्ष्य महाक्षेत्रं योगिनः सिद्धविग्रहाः। पाशुपतं महद्राज्यं स्थलानि ददृशुः क्षणात्[५७] ॥११२॥
पश्यन्ति स्म पुरीं दिव्यां वज्रस्वर्णमयीं पराम्। देवर्षीन् योगिनः सिद्धान् कोटिकोटितपस्विनः ॥११३॥
अर्चयन्ति स्म गुह्याख्यां प्रमथान् योगिनीगणान्। तुष्टुवुर्गिरिजां भक्त्या प्राणमन् दण्डवद्धि ते[५८] ॥११४॥

---

त्यस क्षेत्रमा भ्रमण गर्दा सिद्धले चारैतिर सात द्वीप, समुद्रहरू सबै लोकलाई देखे। सात द्वीप र समुद्रमा जे-जति पदार्थहरू हुन्छन्, ती सबैलाई त्यस क्षेत्रमा उनले देखे। त्यसपछि उनले हिमालय देखे। उनले वाग्मती, रत्नधारा, वृद्धगङ्गा, शृङ्गजा, प्रभावती, इन्द्रमार्गा, विष्णुपदी, समुद्रहरू र तिनको बीचमा रहेको सात द्वीप समेत दर्शन गरेपछि शिवाश्रम जान भनी फर्किए। राजाले त्यस पीठामा चारैतिरबाट सिद्धयोगी तथा देवताहरूद्वारा सेवा गरिएकी कामेश्वरी भगवतीलाई देखे। चारैतिरबाट चौसट्ठी योगिनीहरूद्वारा सुसेवित शिवालाई राजाले महापीठमा विराजमान हुनुभएको अवस्थामा दर्शन गरे ॥१०३-१०८॥

ब्रह्मा, विष्णु, ईश्वर र इन्द्रका शिरोमणिहरूमा रहेका किरणद्वारा आलोक्ति चरणकमलले शोभायमान हुनुभएकी कामाख्यादेवीलाई मणिमय मन्दिरमा राजाले देखे। त्यहाँ केही सिद्धहरू थिए, केही तपस्वी थिए, केही योगी थिए, केही ग्रहहरू थिए र केही स्त्रीहरू थिए। यिनीहरू सबै भगवतीलाई स्तुति, जप र भेटी समर्पण गर्दै उहाँको सेवामा संलग्न भएका थिए। अग्निको ज्वालामा सलह पसेझैँ भगवती दाक्षायणीको तेजमा प्रवेश गर्न लागेका मुमुक्षुहरूको तेजलाई उनले देखे ॥१०९-१११॥

सिद्ध शरीर भएका ती योगीहरूले यस क्षेत्रको दर्शन गरेपछि तुरुन्तै त्यसै ठाउँबाट पशुपतिको ठूलो साम्राज्य देखे। रत्न र सुवर्णद्वारा निर्मित यो उत्तम पुरीलाई देखेर उनले देवर्षि, योगी, सिद्ध, करोडौँ तपस्वी, प्रमथगण, योगिनीगण र गुह्येश्वरीको पूजा गरे। अनि भक्तिपूर्वक गिरिजालाई दण्डवत् प्रणाम गरी स्तुति गरे ॥११२-११४॥

---

५३. सोऽपश्यत्तानि तत्क्षेत्रं क्रमशो हिमवान् तत इति न.सं.पु.पाठः।
५४. वाग्मती रत्नधारा च वृद्धगङ्गा च शृङ्गजा इति न.सं.पु.पाठः।
५५. तयाब्धय इति न.सं.पु.पाठः।
५६. सिद्धान्समाधिनः केचिद्योगिनः खेचराः स्त्रिय इति न.सं.पु.पाठः।
५७. ददृशुस्तत्क्षणात्स्थलात् इति न.सं.पु.पाठः।
५८. प्रणमदण्डवद्धि ते इति न.सं.पु.पाठः।

योगिन ऊचुः

ॐ भवब्रह्मवन्द्यां भवोद्भूतनन्दां भवेशादिभिः पूजितां भव्यरूपाम्।
स्वकीयप्रभाभिर्लसद्भिन्नदेहां भवेशीं भवानीं सुभद्रां भजेऽहम् ॥११५॥
महाकालरात्रिस्वरूपां कृशाङ्गीं सुगुह्याख्यकृष्णां करालाभवक्त्राम्।
प्रगाढाभ्रकालीं कुमाराम्बिकार्यां भजे भद्रकालीमकारादिरूपाम् ॥११६॥
मृडानीमपर्णां चिदानन्दरूपां शिवामीश्वरीं चण्डिकां मोहरात्रिम्।
सुनन्दां जयन्तीं शवालङ्कृताङ्गीम् त्रयीधर्मरूपां भजे सिंहवाहाम् ॥११७॥
महेशप्रियां पार्वतीं गुह्यकालीं मणिभ्राजमाने सुपीठे निषण्णाम्।
मनःकामदोग्ध्रीं सुरैः सेव्यमानां कुमारीं प्रवन्द्यां भजे ज्ञानरूपाम् ॥११८॥
विधात्रीं प्रसन्नां प्रचण्डां सुकेशीं जगत्सारजन्यां जनिस्वान्तसंस्थाम्।
जगज्जीवरूपां जगज्जन्यकर्त्रीं जटाजूटशुभ्रां भजे प्राणरूपाम् ॥११९॥
तमःस्थां रजःस्थामुमां सत्त्वसंस्थां प्रचण्डांशुकोटिप्रभाकालरूपाम्।
कलादिक्षयान्तं युगस्थां त्वमेकां त्रिलोकान्तकाले भजे सत्त्वरूपाम् ॥१२०॥
लसद्योगिचित्तारविन्दाभिरामां लसच्चित्रभोग्यां महायोगिवन्द्याम्।
रवीन्द्वाश्रयामाभिरामाक्षिभव्यां भजे सर्ववर्णैर्मनोज्ञां सुवीणाम् ॥१२१॥
नदीसिन्धुखस्थां सुवीणां महोग्रां भजेऽहं चितिस्थां शिवारावरावाम्।
हरप्राणरामां सुरैर्ध्यायमानां विभूतिं प्रचण्डां सुरप्राणदात्रीम् ॥१२२॥

---

योगीहरूले भने – शङ्कर तथा ब्रह्माकी वन्दनीय, संसारको उत्पत्तिबाट प्रसन्न हुनुहुने, विश्वका स्वामीद्वारा पूजिएकी, सुन्दर स्वरूप भएकी, आफ्नो कान्तिले सुशोभित विलक्षण शरीर भएकी, विश्वकी स्वामिनी, शम्भुकी प्यारी सुभद्राको हामी भजन गर्छौं। महाकालरात्रिस्वरूप भएकी, दुर्बल अङ्ग धारण गर्ने, अत्यन्त गोप्य नाम भएकी, कालो वर्णकी, भयानक मुख भएकी, प्रकाशमय शोभाले युक्त कुमारकी पूज्य माता अकारादि स्वरूप भएकी भद्रकालीको हामी भजन गर्छौं। मृडकी पत्नी, अपर्णा, ज्ञान र आनन्दस्वरूप, शिवा, ईश्वरी, चण्डिका, मोहरात्री, सुनन्दा, जयन्ती, शवद्वारा अङ्गहरू अलङ्कृत गराउनुहुने, वेदप्रतिपादित धर्मस्वरूप भएकी सिंहवाहिनी भद्रकालीको भजन गर्छौं ॥११५-११७॥

शिवजीकी प्यारी, पर्वतकी पुत्री, मणिद्वारा सुशोभित सुन्दर आसनमा विराजमान हुनुभएकी, मनको इच्छा पूर्ण गर्नुहुने, देवताद्वारा सुसेवित, कुमारी, वन्दनीया एवं ज्ञानरूपा गुह्यकालीको भजन गर्छौं ॥११८॥ विश्वलाई पोषण गर्ने, प्रसन्न, प्रचण्ड, राम्रो केश भएकी, जगत्‌की साररूपा, उत्पत्तिको अन्तरात्मामा रहेकी, विश्वकी जीवनस्वरूपा, जगत्‌को उत्पत्ति गर्ने, स्वच्छ जटजूट लगाएकी र प्राणस्वरूपा भगवतीको भजन गर्छु ॥११९॥

तमोगुण, रजोगुण तथा सत्वगुणमा रहनुहुने, करोडौं सूर्यको प्रभाद्वारा सुहाउनुभएकी, कालस्वरुपिणी, कल्पको प्रारम्भदेखि त्यसको अन्त्यसम्म रहनुहुने, प्रत्येक युगमा विद्यमान हुनुहुने र तीनै लोकको अन्त्यमा सत्त्वगुणलाई अवलम्बन गर्नुहुने उमाको भजन गर्छु ॥१२०॥

योगीहरूको चित्तमा कमलजस्तै भएर सुशोभित हुनुहुने, महायोगीहरूले नमस्कार गरिएकी, विचित्र किसिमका भोगले युक्त, चन्द्रमा र सूर्यको आँखाले गर्दा सुन्दर भएकी, राम्रो वीणा लिएकी भगवतीलाई नमस्कार गर्दछौं। नदी, समुद्र र आकाशमा बस्ने, राम्रो वीणा लिने, अत्यन्त उग्र स्यालजस्तो गरी कराउने, चैतन्यस्वरूप शिवजीको प्राणलाई आनन्दित तुल्याउने, देवताद्वारा ध्यान गरिएकी, प्रचण्ड विभूतिस्वरूप भएकी, देवताहरूकी प्राणदात्री भवानीको भजन गर्दछौं ॥१२१-१२२॥

निषण्णां जनानामुरःपुण्डरीके सदा ध्यानगम्यां विवेकोपलब्ध्यै ।
वदन्ति स्वचित्तां[५९] विकेकात्मनस्त्वां तवाऽम्बेह मायांशगोपात्मनस्ते ॥१२३॥
सुरार्यस्रपानस्रवद्रक्तजिह्वा श्रुतेरङ्गरूपा त्वमेव श्रुतिस्त्वम् ।
त्वमेवेश्वरी त्वं हि लज्जा च वाणी त्वामाद्यामनाद्यां भजेऽहं भजेहम् ॥१२४॥
पठन् भक्तियुक्तः[६०] शिवाग्रे शिवात्मा सदा धर्मकामान् मनोवाञ्छितार्थम् ।
प्रभुत्वञ्च मुक्तिं जयं सर्वसिद्धिं लभेतेति शङ्का न कार्या सुधीरैः[६१] ॥१२५॥

स्कन्द उवाच

स्तुत्वा परिक्रमन् सिद्धा ईश्वरीं हरवल्लभाम् । प्रोवाच तत्र राजाऽसौ भक्तिनम्राननो हि सः ॥१२६॥

राजोवाच

अतः परं परं स्थानं भुवनेषु न विद्यते । लोकानां परमं श्रेष्ठं क्षेत्रं कामदुघं शिवम् ॥१२७॥
नैव त्याज्यमिदं क्षेत्रं वाङ्मनोविग्रहैः सदा । सर्वदेवमयं पुण्यं देवानामालयं शुभम् ॥१२८॥

योगीश उवाच

सत्यं प्रोक्तमिदं राज्ञा योगिनात्र द्विजार्हण । ममैव हृदये चाऽस्ति वाञ्छामि[६२] स्थानमत्र वै ॥१२९॥
देहोऽयं मतिमच्छ्रेष्ठ छुद्रोऽवश्यं विपद्यते[६३] । क्षणजीवेन हर्षात्मा कथमत्र त्यजेद्वद ॥१३०॥

---

मानिसहरूको हृदयरूपी कमलमा विराजमान भएकी, विवेकपूर्ण व्यक्तिहरूद्वारा ध्यान गरिएकी हजुरलाई विवेक भएका प्राणीहरूले अन्तर्निहित चैतन्यका रूपमा जान्दछन् । मायाको अंशद्वारा आफूलाई लुकाउने हजुरलाई नमस्कार छ । राक्षसहरूको रगत पान गर्नाले रातो जिब्रो भएकी हजुर वेदको अङ्गस्वरूप हुनुहुन्छ । हजुर नै वेद हुनुहुन्छ, हजुर नै ईश्वरी हुनुहुन्छ, हजुर नै लज्जास्वरूप हुनुहुन्छ, हजुर नै वाणीस्वरूप हुनुहुन्छ, हजुर आद्या पनि हुनुहुन्छ, अनाद्या पनि हुनुहुन्छ, हजुरलाई भजन गर्दछौँ–भजन गर्दछौँ । यो स्तोत्र शङ्करका अगाडि शिवस्वरूप भएर भक्तिपूर्वक पाठ गर्ने पुरुषले सधैँ धर्म, अर्थ, काम, आफूलाई इच्छा लागेको फल, मुक्ति, विजय, संप्रभुता र सबै सिद्धि प्राप्त गर्न सक्छ । यस विषयमा विचार गरिरहनु पर्दैन ॥१२३–१२५॥

कार्तिक स्वामीले भन्नुभयो – ती सिद्धहरूले हरप्रिया भगवतीको यसरी स्तुति गरेर परिक्रमा गरे । ती राजाले पनि भक्तिपूर्वक झुकेर सिद्धहरूसँग भन्न थाले ॥१२६॥

राजाले भने – यसभन्दा उत्तम क्षेत्र चौधै भुवनमा छैन, सबै लोकमा अत्यन्त श्रेष्ठ यो क्षेत्र यथेष्ट फल दिने र कल्याणकारक छ । देवताहरूको शुभस्थान र देवमय यो पवित्र क्षेत्रलाई मन, वचन र शरीरले कदापि छोड्नुहुँदैन ॥१२७–१२८॥

योगीश्वरले भने – हे पूज्य द्विजश्रेष्ठ ! योगनिष्ठ राजाले सत्य कुरा बोल्नुभयो, यस क्षेत्रमा बस्ने मेरो इच्छा मनमा छ किनभने क्षुद्र शरीरको अवश्य नाश हुन्छ । जीवनको क्षणिक आनन्दका लागि यो क्षेत्र कसरी छाडौँ ? भन्नुहोस् ॥१२९–१३०॥

---

५९. स्वचिन्ताम् इति न.सं.पु.पाठः ।
६०. पठद् भक्तियुक्त इति न.सं.पु.पाठः ।
६१. लभेन्नात्र कार्यो विचारो हि धीरै इति न.सं.पु.पाठः ।
६२. वाञ्छे इति न.सं.पु.पाठः ।
६३. क्षुद्रोऽयं मतिमच्छ्रेष्ठ अवश्यञ्च विपद्यते इति न.सं.पु.पाठः ।

### जैगीषव्य उवाच

एवमेव हि योगीशौ मद्धृदि वर्त्तते च यत्। भवद्भ्यां वर्णितं यन्नः तत्सर्वं हृदयङ्गमम् ॥१३१॥
तं सेविष्यामहे शम्भुमार्यया[६४] सह सन्ततम्। सर्वदेवमयं रूपं सर्वलोकैः प्रसेवितम् ॥१३२॥
सर्वलोकात्परं स्थानं सर्वलोकतपोमयम्। यत्रैव पशुपो विष्णुः गुह्येश्वरी पितामहः ॥१३३॥
यत्र चोवाह गङ्गाऽसौ ब्रह्मसरस्वती शिवा। वाग्वती मोक्षदा देवी कथं त्याज्यमिदं परम् ॥१३४॥
स्वं स्वं लोकं परित्यज्य सुरैर्ब्रह्मपुरोगमैः। स्थीयतेऽत्र तपःस्थाने पशुपार्चापुरःसरम्[६५] ॥१३५॥
तप्त्वाऽत्र प्राप्नुयात्[६६] कामं भूतिनिर्वाणमेव च। सिद्धक्षेत्रं कथं त्याज्यं सर्वलोकमहत्तमम्[६७] ॥१३६॥
क्षेत्रे माहेश्वरे दिव्ये सर्वलोकतपोमये। पितरौ जगतां सिद्धाः सेवमानाः वसेम हि[६८] ॥१३७॥

### स्कन्द उवाच

एवं विमृश्य योगीशाश्चाऽवात्सुस्तत्र शाङ्करे। मनोजवाः शिवात्मानो योगाभ्यासरताः सदा[६९] ॥१३८॥
पाशुपतेन नास्त्यन्यं समं क्षेत्रं रसातले। क्षेत्रं तपोमयं सर्वं सत्यं सत्यं वदाम्यहम् ॥१३९॥
भक्त्या च शृण्वन्त्यनिशं पवित्रमध्यायमेनं सरसैकचित्ताः[७०]।
पुत्रं सुकीर्तिं धनधान्यमायुः प्राप्स्यन्ति पापानि विहाय नाकम् ॥१४०॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालक्षेत्रमाहात्म्यं नाम त्रिसप्ततितमोऽध्यायः ॥७३॥

---

जैगीषव्यले भन्नुभयो – हे योगीश्वर हो ! मेरो मनमा पनि यस्तै लागेको छ। मैले जे सोचेको थिएँ, तपाई.हरूले पनि त्यही कुरा वर्णन गर्नुभयो। मलाई लाग्छ– यहाँ बसेर म सधैँ सर्वदेवमय, सर्वलोकले सेवित, महादेव र भगवती आर्याको सधैँ सेवा गरूँ। सबै लोकभन्दा यो उत्तम स्थान हो। सबै लोकमा यो तपोमय छ। यहाँ भगवान् पशुपतिनाथ, विष्णु, गुह्येश्वरी र ब्रह्मा बस्नुहुन्छ ॥१३१–१३३॥

यहाँ ब्रह्मसरस्वतीको स्वरूप लिएर कल्याणदाता, मोक्षदाता, वाग्मती गङ्गा बगेकी छन्। यस्तो क्षेत्रलाई कसरी त्याग गरौँ ?। ब्रह्मा आदि देवताहरू आ–आफ्नो लोकलाई छाडेर भगवान् पशुपतिनाथको पूजा गर्दै तपस्याका लागि यहाँ बसेका छन्। यहाँ तपस्या गरेर सुख, सम्पत्ति, मोक्ष सबैथोक पाइन्छ। सबै लोकको शिरोमणि भएको यस सिद्धक्षेत्रलाई कसरी छाड्नु ?। सबै लोकमा तपोमय भएको दिव्य माहेश्वर क्षेत्रमा संसारका आमा–बाबु शिव र पार्वतीलाई सेवा गरेर हामी सिद्ध यहीँ बसौँ ॥१३४–१३७॥

कार्तिक स्वामीले भन्नुभयो – यस्तो कुरा छलफल गरेर मनको जस्तो वेग भएका कल्याणमय ती योगीहरू योगाभ्यासमा संलग्न भएर त्यसै शङ्करक्षेत्रमा बसे। यस पृथ्वीतलमा पाशुपत क्षेत्रजस्तो अर्को कुनै क्षेत्र छैन। यो क्षेत्र सधैँ तपोमय छ। म साँचो कुरा बताउँछु ॥१३८–१३९॥

जसले यो पवित्र अध्यायलाई हृदय दिएर भक्तिपूर्वक एकचित्त भई सुन्छन्, तिनीहरूले पुत्र, कीर्ति, धन, धान्य र आयु पाउनेछन् र तिनीहरू पापबाट मुक्त भएर स्वर्ग जानेछन् ॥१४०॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा नेपालक्षेत्रको माहात्म्यनामक त्रिहत्तरौँ अध्याय पूरा भयो।

---

६४. सेविष्यामहे महेशानमार्यया इति न.सं.पु.पाठः।
६५. पशुभर्त्तारमर्हयन् इति न.सं.पु.पाठः।
६६. अत्र तप्त्वा लभेत् इति न.सं.पु.पाठः।
६७. सर्वलोकशिरोमणिम् इति न.सं.पु.पाठः।
६८. सिद्धास्तिष्ठाम सेवयन् सदा इति न.सं.पु.पाठः।
६९. योगाभ्यासं निरन्तरम् इति न.सं.पु.पाठः।
७०. मध्यायमेतद्धृदयैकचित्ता इति न.सं.पु.पाठः।

# चतुःसप्ततितमोऽध्यायः

## पशुपतिमहिमा तल्लिङ्गाविर्भावश्च

अगस्त्य उवाच

देवेश सर्वविन्मे च श्रुत्वा मनो विजृम्भते। पाशुपत्याश्च माहात्म्यं त्वन्मुखाद्[1] महदद्भुतम् ॥१॥
कथं देवः समुद्भूतः पशुभर्ता महेश्वरः। कुतो बीजान्महालिङ्गं कदाकाले चमूपते ॥२॥
ज्योतिर्मयं महाचित्रं कथं स्थावरतां गतम्। तथैव नगरी चापि वदैतन्मे षडानन ॥३॥

स्कन्द उवाच

आसीदेकार्णवे घोरे सर्वसत्त्वविवर्जिते। निःशेषेण पुरा तत्र मेदिनी सा जलाप्लुता ॥४॥
नष्टे च तारके देवे सूर्यचन्द्रामिधेऽपरे[2]। अन्धीभूते रसार्णे च द्वौ देवौ च व्यवस्थितौ ॥५॥
अवशिष्टौ घटोद्भूत नारायणपितामहौ। तन्मायामोहितौ देवौ तमोगुणप्रधानगौ ॥६॥
एकदा दिवसे देवौ प्रवादं चक्रतुर्मिथः। जलक्रीडास्थितौ तत्र शून्यसत्त्वौ जलाप्लुतौ[3] ॥७॥

ब्रह्मोवाच

मत्तो जानीहि भो विष्णो जगतोऽस्य समुद्भवः[4]। नान्यो जगत्पतिर्देव ऋते[5] मां जगतीह कः ॥८॥
को देवो मां विना कर्ता को भोक्ता कः पतिर्वद। को दाता पालकः स्रष्टा कः पिता कः पितामहः ॥९॥
अहं तु जगतां कर्ता हर्ता च पालकस्तथा। अहमेव विभुर्ज्ञेयो वाञ्छादाता न चापरः[6] ॥१०॥
ये ये पर्युषिता देवा मया ते वासवा हरे। जीवन्ति के विना मां च[7] देहिनो मद्विभूतयः ॥११॥
सर्वभूतगुहास्थोऽहं सर्वेन्द्रियविजृम्भकः। ब्रह्मानन्दोऽहमाद्योऽजः सर्वमनःश्रितोऽनिशम् ॥१२॥

---

## अध्याय – ७४

## पशुपतिको महिमा र पशुपतिलिङ्गहरूको आविर्भाव

अगस्त्य मुनिले भन्नुभयो – हे सर्वज्ञ कार्तिक स्वामी ! हजुरबाट अत्यन्त अद्भुत पाशुपती नगरीको माहात्म्य सुनेर अहिले मेरो मन प्रफुल्लित भएको छ। हे कार्तिक स्वामी ! महेश्वर कसरी पैदा हुनुभयो ? कुन बीजबाट कहिले ज्योतिर्मय महालिङ्गको उत्पत्ति भयो ? अचम्म छ, कसरी त्यो लिङ्ग स्थावर बन्न पुग्यो ? त्यस्तै नगरको सृष्टि कसरी भयो ? यो सबै मलाई बताउनुहोस् ॥१–३॥

कार्तिक स्वामीले भन्नुभयो – अघि सम्पूर्ण प्राणीहरूले वर्जित डरलाग्दो समुद्रमा पृथ्वी पूर्ण रूपले डुबेकी थिइन्। सम्पूर्ण तारा, देवता, सूर्य, चन्द्रमा र अरू प्राणीहरू नाश भएपछि पृथ्वी र समुद्र अन्धकारले भरिएको थियो, त्यतिखेर ईश्वरीय मायाले मोहित भएका तमोगुणप्रधान नारायण र ब्रह्मा मात्र बाँकी रहनुभएको थियो। एकपटक प्राणीहरूले वर्जित जलाम्य भएको त्यस क्षेत्रमा जलक्रीडामा संलग्न रहेका ती दुई देवताहरूले परस्परमा विवाद गरे ॥५– ७॥

ब्रह्माले भन्नुभयो – हे विष्णु ! यो सम्पूर्ण संसार मबाट नै उत्पन्न भएको हो। यस संसारको स्वामी म बाहेक अर्को कोही छैन। म बाहेक अर्को देवता को छ ? को कर्ता छ ? को भोक्ता छ ? को पति छ ? को दाता छ ? को पालक छ ? र को स्रष्टा छ ? म नै जगत्को कर्ता, हर्ता र पालक हुँ। मलाई सबै इच्छा पूर्ण गर्न सक्ने ईश्वर भनेर ठान्नुहोस्। अरू कोही ईश्वर छैन। हे विष्णु ! देवताहरू मेरै आश्रयमा जीवित रहेका छन्। म विना कुन प्राणी बाँच्न सक्छन् ? यी सबै प्राणीहरू मेरा विभूति हुन्। म सबै प्राणीको अन्तर्यामी छु, सबैका इन्द्रियलाई सञ्चालन गर्छु, म ब्रह्मानन्द हुँ, म सबैको आदि हुँ र अजन्मा हुँ। म सधैँ सबै प्राणीको मनमा बस्छु ॥८–१२॥

---

१. त्वत्तोऽधुना इति न.सं.पु.पाठः।
२. सूर्यचन्द्रे तथापरे इति न.सं.पु.पाठः।
३. जलक्रीडास्थिते तत्र शून्ये सत्त्वे जलाप्लुते इति न.सं.पु.पाठः।
४. जगत्सर्वं समुद्भतम् इति न.सं.पु.पाठः।
५. ऋतम् इति न.सं.पु.पाठः।
६. वाञ्छाप्रदश्च नापर इति न.सं.पु.पाठः।
७. मात्रा इति न.सं.पु.पाठः।

विष्णुरुवाच

सर्वकर्ता ह्यहं धातः सर्वलोकपितामहः । सर्वभूतेष्वहं रूढः सर्वरूपो निरञ्जनः ॥१३॥
विन्ध्याद्विभुरहं ब्रह्मन् देवदेवस्वरूपकः । सत्त्वप्रधानदेहोऽहं सर्वसत्त्वदयाकरः ॥१४॥
नित्योऽहं निर्विकारोऽहं सूक्ष्मः स्थूलोऽहमच्युतः । सर्वदानन्दरूपोऽहं विश्वानन्दः सदीश्वरः ॥१५॥
मयैव सकलं जातं मय्येवाऽन्ते प्रलीयते । मयैव पाल्यते सर्वं[८] तद्ब्रह्माऽस्म्यहमद्वयः ॥१६॥
विश्वरूपोऽहमाद्योऽहं मत्तोऽन्यः को वदामरः । लीयन्ते मयि सर्वेऽन्ते तं मां जानीहि विष्टप ॥१७॥

स्कन्द उवाच

एवमभूत्पुरात्यन्तं विवादोऽमरयोर्मुने । अन्योन्यं वदतोऽजस्रं रजस्तमोगुणान्धयोः ॥१८॥
तदा महाविभुस्तत्र जलरूपो जगत्पतिः । क्रीडन्तौ तौ स्वकीयाङ्के विवदन्तौ[९] ददर्श च ॥१९॥
अहं कर्ता च हर्तेति[१०] मत्तो नान्यो जगत्पतिः । एवं मिथो वदन्तौ द्वौ गुणाभ्यां संप्लुतौ भृशम् ॥२०॥
तयोर्दर्पापहाराय प्रबोधार्थं स देवयोः । जगतां रक्षणायाऽत्र सम्भवितुं मनो दधे ॥२१॥
दिव्यायुतसमान्ते च वाच्यमाने तयोरिति । कर्ताऽसौ जगतां धाम सर्वरूपो ह्यजीजनत् ॥२२॥
एवं च क्रोशयोर्मध्ये विवादपरयोर्मिथः । तदाऽभवत् कनिष्ठं तत्[११] लिङ्गं तैजसमैश्वरम् ॥२३॥
आमूलाद् ब्रह्मपर्यन्तं विसतन्तुवदाततम्[१२] । तैजसं परमं सूक्ष्मं विद्युदिव सुचञ्चलम् ॥२४॥
अव्यक्तं परमं लिङ्गं ज्योतिर्मयं[१३] परात्परम् । सूक्ष्मरूपं महादीर्घं चाऽनादिलिङ्गमैश्वरम् ॥२५॥
ददृशतुश्च तल्लिङ्गं तौ विद्युदिव चञ्चलम् । मध्ये व्यवस्थितं तत्र तं स्वकीयान्तरे परम् ॥२६॥
तेजोरूपं महादीर्घं वर्धते स्म[१४] भृशं क्रमात् । योजनायतविस्तीर्णं बहुयोजनमुच्छ्रितम् ॥२७॥

---

विष्णुले भन्नुभयो – हे ब्रह्मा ! म सबैको कर्ता हुँ, म सबैको पितामह हुँ, सबै प्राणीमा मेरो वास छ, सबै मेरै रूप हुन्, म निरञ्जन छु। हे ब्रह्मा ! म व्यापक छु, देवस्वरूप छु भन्ने कुरा बुझ। सत्वप्रधान देह भएको र प्राणीमाथि दया गर्ने म नै छु। म नित्य छु, निर्विकार छु, स्थूल छु, सूक्ष्म छु, अच्युत छु, सर्वदा आनन्दस्वरूप छु र विश्वलाई आनन्द दिने सच्चा ईश्वर पनि म नै हुँ। मबाट नै सम्पूर्ण संसारको सृष्टि भएको हो। यो जगत् अन्त्यमा गएर ममा विलीन हुन्छ। मैले नै यसको पालन गर्छु, त्यसैले अद्वितीय ब्रह्म भनेको म नै हुँ। म विश्वरूप र विश्वको आदि हुँ, मभन्दा अर्को देवता को छ र ? अन्त्यमा सबै ममा नै लीन हुन्छन्। हे ब्रह्मन् ! मलाई यस्तो ठान्नुहोस् ॥१३–१७॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! रजोगुण र तमोगुणले अन्धा भएका दुई देवताहरूको बीचमा अघि परस्पर निकै समयसम्म यसरी ठूलो विवाद भयो। त्यसबेला महाप्रभु जगदीश्वर शिवले जलरूपी आफ्ना काखमा समान रूपमा क्रीडा गर्दै विवाद गर्न लागेका ती ब्रह्मा र विष्णुलाई देख्नुभयो। म कर्ता हुँ, म कर्ता हुँ, मभन्दा अर्को संसारको मालिक छैन भनेर परस्परमा विवाद गरिरहेका रजोगुण र तमोगुणले व्याप्त ती दुई देवताको सेखी तोडेर उनीहरूलाई यथार्थतत्त्वको बोध गराउन जगत्कर्ता भगवान् शिवले आफैं उत्पन्न हुने मन बनाउनुभयो ॥१८–२१॥

दिव्य दश हजार वर्षसम्म यो विवाद चली नै रह्यो। जगत्का कारण र आश्रय भएका सबै रूप लिन सक्ने भगवान् महादेव प्रकट हुनुभयो। दुईकोसभित्र रहेर तिनीहरूले यस्तो विवाद गरिरहेको बेलामा त्यसै ठाउँमा तीन देवतामध्ये कान्छा देवताका रूपमा ईश्वरको तैजस लिङ्गको आविर्भाव भयो ॥२२–२३॥

त्यो लिङ्ग फेददेखि आकाशसम्म फैलिएको थियो। त्यो कमलको तन्तुजस्तै मसिनो, तेजोमय, अत्यन्त सूक्ष्म र बिजुलीजस्तो चञ्चल बन्यो। अव्यक्त र उत्कृष्ट त्यो लिङ्ग परभन्दा पनि पर ज्योतिपुञ्जस्वरूप सूक्ष्म र अत्यन्त लामो एवं अनादि भयो। दुई जनाको बीचमा रहेको बिजुलीजस्तो चञ्चल त्यस लिङ्गलाई उनीहरूले देखे। त्यो अत्यन्त लामो तेजपुञ्ज बढ्दै गयो र ज्यादै लामो भयो। यो एक योजन चाक्लो र धेरै योजन अग्लो भयो ॥२४–२७॥

---

८. ते वै इति न.सं.पु.पाठः ।
९. अहङ्कर्ताहङ्कर्तेति इति न.सं.पु.पाठः ।
१०. स्वकीयाङ्केऽनिशं क्रीड्य वक्तारौ तौ ददर्श ह, इति न.सं.पु.पाठः ।
११. कनीयांसम् इति न.सं.पु.पाठः ।
१२. विसतन्तुतनीयसम् इति न.सं.पु.पाठः ।
१३. ज्योतिःपुञ्जम् इति न.सं.पु.पाठः ।
१४. तेजःपुञ्जं महादीर्घं संववर्द्धम् इति न.सं.पु.पाठः ।

प्रज्वलितं[१५] स्वतेजोभिरव्यक्तं तेजसा परम्। विराजते तमोगेहे यथा दीपशिखा भृशम् ॥२८॥
तत्तेजोभिः प्रदग्धाङ्गौ दूरं दुद्रुवतुर्भृशम्। तत्तेजोऽसहमानौ तौ तमःक्षेत्रं समुद्गतौ ॥२९॥
तत्तेजोऽसहमानाङ्गौ शङ्काभिः पूरितौ सुरौ। दुद्रुवतुर्हि तत् त्यक्त्वा योजनं हि तमःप्लुतौ ॥३०॥
अव्यक्तञ्चैव तल्लिङ्गमिति चिन्ताकुलौ सुरौ। तदा चाऽव्यक्तरूपं हि प्रेक्ष्य मायापरिप्लुतौ ॥३१॥
प्रबोधनाय तौ देवश्चाऽन्तरिक्षादुवाच च।

ज्योतिरूप उवाच

त्वया ब्रह्मन्नृतं प्रोक्तं रजोगुणविमिश्रितः ॥३२॥
ब्रह्मशब्दस्त्वमेवाजः सर्वलोकपितामहः। स्रष्टा त्वमसि सर्वेषां त्वत्तोऽन्यो नास्ति हैतुकः ॥३३॥
सर्वेषां हि प्रभुर्नस्त्वं स्रष्टाऽजः प्राणिनां यतः[१६]। मा त्वयैवञ्च वक्तव्यमभिमानेन बालिशः ॥३४॥
विष्णो त्वयापि सत्योक्तं पालकोऽहमिति ध्रुवम्। मत्तो वरं समासाद्य पासि लोकञ्च सर्वशः ॥३५॥
सर्वकर्ता भवो नाऽन्यो भवान् बीजं प्रभुस्तथा। मैवं प्रजल्पसे विष्णो पालगर्वपरिप्लुत।
ब्रह्मन् विष्णो अभूता[१७] हि भवन्तौ गर्वसम्प्लुतौ ॥३६॥
योऽभिमानाश्रितो लोके भवेद्धास्याय सर्वतः। स्वल्पशक्तिं समासाद्य चाऽपारं पारमिच्छति ॥३७॥
स एवमिह हास्यः स्यात् लोकविडम्बको भवेत्। ब्रह्मन् विष्णो सत्यवाचौ[१८] भवन्तावधुनेति च ॥३८॥
अहङ्कर्तेत्यहङ्कर्ता नान्यो जगति मे परः। भवन्तौ पृच्छतामत्र तेजःपुञ्जं पुरःस्थितम् ॥३९॥
तदन्तिकं समागत्य चिन्त्यतां किमिति ध्रुवम्। भवन्तौ यदि कर्त्तारौ जगतामपि सर्वशः ॥४०॥
एतत्स्तम्भस्य मूलाग्रे व्रजेतां परमं शुभम्[१९]। यो गमिष्यति चैतस्य पारमूर्ध्वमधोऽपि वा ॥४१॥
कर्त्ता स एव लोकानां नात्र कार्यञ्च वल्गनम्। व्रजतमद्य चैतस्य[२०] चोर्ध्वमधोऽपि वा युवाम् ॥४२॥
प्रत्यागत्यात्र वक्तव्यं[२१] यथा दृष्टमृतं तथा।

---

आफ्नो तेजले प्रकाशित, सबै तेजहरूमा श्रेष्ठ र अव्यक्त त्यो लिङ्ग अँध्यारो घरमा बत्तीको ज्वालाजस्तै सुशोभित भयो। त्यस तेजको तापले सन्तप्त भएका ब्रह्मा, विष्णु अत्यन्त टाढा भागे। त्यो तेज सहन नसकेर अँध्यारो क्षेत्रमा गए। त्यो तेज सहन नसक्ने शरीर भएका, शङ्काले व्याप्त ती देवताहरू, त्यो ज्योतिलाई त्यसै ठाउँमा छोडेर कोसौं टाढा अन्धकारले युक्त भएको प्रदेशमा गए। त्यो अव्यक्त छ भन्ने चिन्ताले व्याकुल भएका मायाले मोहित ती देवताहरूलाई त्यसबेला बोध दान गर्नका लागि अव्यक्त रूप भगवान्ले आकाशबाट भन्नुभयो ॥२८–३१½॥

ज्योतिरूप भगवान्ले भन्नुभयो – हे ब्रह्मन् ! रजोगुणी तिमीले भनेको कुरा साँचै हो। ब्रह्मशब्दको व्याच्यार्थ, अजर, सबै लोकका पिता तिमी नै हो, तिमीले सबैको सृष्टि गर्छौ, तिमीभन्दा अर्को छैन, तिमी सबैका मालिक हौ, सबैको सृष्टिकर्ता तिमी नै हौ ॥३२–३३॥

यसो हो तापनि तिमी सबैका स्रष्टा हौइनौ, तिमीले अभिमान गरेर म नै सबैभन्दा ठूलो देवता हुँ भन्न सुहाउँदैन। हे विष्णु ! तिमीले पनि विश्वको पालक मै हुँ भनेर जुन भन्यौ, त्यो सत्य छ॥३४॥ मबाट वर पाएर तिमीले सबै किसिमका पालन गर्छौ। हे विष्णु ! पालकको घमण्डले व्याप्त भएर सबैको कर्ता, सबैको कारण र प्रभु मै हुँ, अर्को छैन भनेर नभन। हे ब्रह्मन् ! हे विष्णु ! तिमीहरू दुबै घमण्डी रहेछौ ॥३५–३६॥

लोकमा जो अभिमानी हुन्छ, त्यसको उपहास गर्छन्। जसले सानो शक्तिद्वारा तर्न नसक्ने वस्तुलाई तर्न खोज्छ, त्यो पुरुष संसारमा उपहासको पात्र र ठग ठहरिन्छ। त्यसैले हे ब्रह्मा ! हे विष्णु ! तिमीहरूले भनेको कुरा साँचै हो। म कर्ता हुँ, म कर्ता हुँ, मभन्दा अर्को जगत्मा कोही छैन भन्ने विषयमा यहाँ आएर अगाडि रहेको तेजपुञ्जसित सोध। यदि तिमीहरू नै सर्वथा संसारका कर्ता हौ भने त्यस लिङ्गको समीपमा आएर के रहेछ त्यो कुरा बुझ। यो स्तम्भको फेद र टुप्पो ज्यादै पर पुगेको छ। जसले यसको फेद अथवा टुप्पाको छेउ पत्ता लगाउनेछ, त्यो नै यस संसारको सृष्टिकर्ता हुन्छ। मानिसहरूको अगाडि ज्यादा बकबक गरेर के हुन्छ र ? त्यसैले तिमी दुई जना यस स्तम्भको तलतिर र माथितिर अर्थात् एक जना फेदतिर र एक जना टुप्पोतिर जाओ। त्यसको अन्त्य पत्ता लगाएर आओ र जस्तो दैख्यौ, त्यस्तै साँचो कुरा भन ॥३७–४२½॥

---

१५. ज्वलमानम् इति न.सं.पु.पाठः।
१६. जीविनोन्यत इति न.सं.पु.पाठः।
१७. भवेताम् इति न.सं.पु.पाठः।
१८. विष्णोऽत्र सत्योक्तौ इति न.सं.पु.पाठः।
१९. परमा शुभा इति न.सं.पु.पाठः।
२०. व्रजन्नद्यैवमेतस्य इति न.सं.पु.पाठः।

स्कन्द उवाच

विरराम स चेत्युक्त्वा ज्योतीरूपस्तथाम्बरे ॥४३॥
तन्निवृत्ते सति व्योम यथाप्रकृति संस्थितम् । ततस्तस्मिन्निवृत्ते च समाकर्ण्य हि तद्वचः ॥४४॥
ब्रह्मा विष्णुस्तदा तूष्णीमेवमेवञ्च संस्थितौ । अपश्यतां दिशः सर्वाश्चाधश्चोर्ध्वं तथा जलम् ॥४५॥
कोऽसौ वदति वा व्योम्न इतिकृत्वाऽमरौ ध्रुवम् । इति चिन्तापरौ देवौ बभूवतुस्तदा भृशम् ॥४६॥
कोऽसौवस्मिंश्च निःशेषे चाऽशरीरे वदत्यजः । किं कर्त्तव्यमिहावाभ्यामृतमुक्तं हि ते नमः ॥४७॥
अशरीरेण यत्प्रोक्तं तत्प्रमाणं न संशयः । एवं विचारयन्तौ तौ चाऽशरीरवचो मुने ॥४८॥
विष्णुपितामहौ तथ्यं संस्थितौ विमलेऽम्भसि ।
तौ ज्ञानवन्तौ हरिरब्जयोनिरस्मत्परः कोऽपि च वर्त्ततेऽजः ।
कृत्वा च तथ्यमशरीरवाग्वै गन्तुं हि वाञ्छां किल चक्रतुस्तम् ॥४९॥

इति श्रीस्कन्दपुराणे पशुपतिमाहात्म्ये लिङ्गोत्पत्तिर्नाम चतुःसप्ततितमोऽध्यायः ॥७४॥

---

कार्तिक स्वामीले भन्नुभयो – ज्योतिरूप भगवान् इति भनेर चुप लाग्नुभयो र आकाशमा विलीन हुनुभयो। उहाँ गएपछि आकाश पनि आफ्नो प्रकृतिमा आयो। उहाँ फर्किएपछि ज्योतिरूपको त्यो वचन सुनेर ब्रह्मा र विष्णु दुबै चुप लागेर बसे। आकाशबाट यो बोल्ने को हो ? भनेर उनीहरूले तल, माथि, पानी र सबै दिशातिर हेरे। त्यसपछि ती दुबै देवताहरू अत्यन्त आश्चर्यचक्ति भए। ब्रह्माले भने – यो कुनै शरीरधारी नभएको ठाउँमा बोल्ने को हो ?। यस परिस्थितिमा हामीले अब के गर्ने ? शरीर नभएको तेजले जे कुरा भन्यो, त्यो सत्य छ, यसमा शङ्का छैन, त्यसलाई नमस्कार छ। यसरी निर्मल पानीमा बसेका विष्णु र ब्रह्माले अशरीरीरले भनेको वचनलाई सत्य हो भन्ने विचार गरे ॥४३–४८½॥

ती ज्ञानी ब्रह्मा र विष्णुले हामीभन्दा पनि अर्को कुनै अजन्मा पुरुष छ भन्ने ठानेर अशरीरीरको भनाइलाई तथ्य ठान्दै वास्तविकता पत्ता लगाउनका लागि त्यस स्तम्भको तल र माथि जाने विचार गरे ॥४९॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा पशुपतिको माहात्म्य र पशुपतिलिङ्गको उत्पत्तिनामक चौहत्तरौं अध्याय पूरा भयो।

---

२१. चोच्येताम् इति न.सं.पु.पाठः।

# पञ्चसप्ततितमोऽध्यायः

ज्योतिर्लिङ्गस्याविर्भावः

स्कन्द उवाच

एवं विमृश्य तौ देवावाराधनाय[1] जग्मतुः। तत्समीपे ततो ब्रह्मा व्याचष्टे श्रीहरिं पुनः ॥१॥

ब्रह्मोवाच

विष्णो त्वं गच्छ पातालं तन्मूलं पश्य तत्र च। ऊर्द्ध्वं व्रजामि तत्कोटिं द्रष्टुं यत्र च विद्यते ॥२॥
अशरीरेण चाऽत्रैव नः प्रोक्तं हि यथाविधम्। तथा च कथयिष्यावस्तद्वृत्तान्तमृतं यथा ॥३॥

स्कन्द उवाच

समाकर्ण्य ततो विष्णुर्ब्रह्मणो वचनं शुभम्। अगमत्खलु पातालं तन्मूलं हि विलोकितुम्[2] ॥४॥
सप्तलोकान् समुत्तीर्य ब्रह्मा चोर्ध्वं गतस्ततः[3]। गवां लोकं तदूर्ध्वञ्च चाऽदर्शत्सुरभिं शुभाम् ॥५॥
ददर्श कामधेनुस्तं ब्रह्माणं तत्र चाऽऽगतम्। सप्तलोकान् समुत्तीर्यं कृच्छ्रं परिश्रमाकुलम्[4] ॥६॥
प्रणम्य प्रार्चयत् तं[5] सा ब्रह्माणं लोककारणम्। विष्टरे चोपवेश्याऽऽदौ पप्रच्छ कुशलं तदा ॥७॥

सुरभिरुवाच

स्वागतं भो महाब्रह्मन् सर्वलोकपितामह। अहोभाग्यं मयैवाऽद्य प्राप्तं वो दर्शनं यतः ॥८॥
कुशलं सप्तलोकेषु चाऽस्ति सर्वेषु विश्वसृक्। शरीरेषु च देवानां भवताञ्च विशेषतः ॥९॥
केन कार्येण सम्प्राप्तो भवानत्र परिश्रमात्। विहितश्च मया नूनं प्रश्नोऽयमविचारतः ॥१०॥
भूर्भुवःस्वेषु वृत्तान्तं भवान् ज्ञाता न संशयः। तेषु यद्विद्यते ब्रह्मन् कथ्यतां सर्वविद्विभो ॥११॥

---

## अध्याय – ७५

ज्योतिर्लिङ्गको आविर्भाव

कार्तिक स्वामीले भन्नुभयो – यसरी विचार गरेर ब्रह्मा र विष्णुले लिङ्गको आराधना गर्न जानुभयो। नजिकै पुगेर ब्रह्माले फेरि विष्णुलाई भन्नुभयो ॥१॥

ब्रह्माले भन्नुभयो – हे विष्णु ! तपाईं पातालतिर जानुहोस् र त्यहाँ गएर हेर्नुहोस्। जहाँ यस लिङ्गको टुप्पो छ, त्यसलाई भेट्टाउन म आकाशतिर जान्छु। अशरीरीले हामीलाई जसरी भनेको छ, त्यसरी नै त्यो वृत्तान्त सत्यरूपमा भन्नेछौँ, अर्थात् त्यसको अन्त्य र आदि जस्तो छ, त्यस्तै जसले पत्ता लगाए पनि आएर बताउनेछौँ ॥२–३॥

कार्तिक स्वामीले भन्नुभयो – विष्णुले ब्रह्माको कल्याणमय त्यो वचन सुनेपछि त्यस लिङ्गको फेद पत्ता लगाउन पातालतिर जानुभयो। ब्रह्मा पनि मास्तिर सात लोक र त्यसभन्दा माथि गोलोकमा पुग्नुभयो। उहाँले सुरभि गाईलाई भेट्नुभयो। कामधेनुले सात लोक नाघेर दुःखका साथ परिश्रम गर्दै आएका ब्रह्माजीलाई देखिन्। उनले लोकका स्रष्य पूजनीय ब्रह्मालाई प्रणाम गरिन् र आसनमा राखेर कुशल मङ्गल सोधिन् ॥४–७॥

कामधेनुले भनिन् – सबै लोकका पितामह हे ब्रह्मा ! हजुरको स्वागत छ। मेरो आज ठूलो भाग्य रहेछ, किनभने मैले हजुरको दर्शन गर्न पाएँ। हे ब्रह्मा ! सातै लोकमा कुशलै त छ ? देवता र विशेषगरी हजुरको शरीरमा आरामै त छ ? अहिले तपाईं कति कामले परिश्रम गरेर यहाँ आउनुभयो ? विचारै नगरीकन यो प्रश्न मैले गरेँ। हे सर्वज्ञ ! भूर्लोक, भुवर्लोक र स्वर्लोकमा भएको वृत्तान्त सबै हजुर जान्नुहुन्छ, यसमा सन्देह छैन। ती लोकहरूमा जे छ, सबै कुरा बताउनुहोस् ॥८–११॥

---

१. देवौ चाराधितुञ्च इति न.सं.पु.पाठः।
२. प्रदर्शितुम् इति न.सं.पु.पाठः।
३. ब्रह्मापि चाऽगमत्तस्मादूर्ध्वं हि सप्तलोककम्, इति न.सं.पु.पाठः।
४. परिश्रमायुतम् इति न.सं.पु.पाठः।
५. चार्चिवन्तम् इति न.सं.पु.पाठः।

ब्रह्मोवाच

कुशलं किल सर्वेषु शरीरेषु च नोऽनिशम् । शून्यभूते परं स्वर्गे जानीहि त्वमिमे तनू ॥१२॥

ममागमनकार्यञ्च कामधेनो ! शृणु ध्रुवम् । यतः समागतश्चाऽत्र तत्कारणं वदामि ते ॥१३॥

अम्भसाच्छादिते चाऽस्मिन् चैकार्णवे रसातले । मन्वन्तरे युगस्याऽन्ते कलिशेषोऽभवत्पुनः ॥१४॥

विष्णुना सह संवादे जाते च रहसि पुनः । नो मध्ये चाऽभवत्पूज्यं ज्योतिर्लिङ्गं सुदीर्घकम् ॥१५॥

प्रेक्षमाणौ स्थितावावां[६] चाऽशरीरेण बोधितौ । विष्णुर्गतश्च पातालमत्रागतस्तथाऽस्म्यहम् ॥१६॥

लिङ्गाग्रदर्शनं कृत्यं सुरभे मम वर्तते[७] । एतस्य मूलं दृष्टं न कथं पश्यामि तद्वद ॥१७॥

कामधेनुरुवाच

शिवलिङ्गमिदं नैव केनापि[८] ज्ञायते विभो । तन्मूलाग्रं हि वेत्तुं नो समर्थः कोऽपि विद्यते ॥१८॥

अनादिलिङ्गमाद्येशं शाश्वतं सुरनायकम् । कोऽपि न विद्यते वेत्ता ममापि नन्वगोचरम् ॥१९॥

सूक्ष्मलिङ्गोपरि क्षीरं प्रस्रवामि च नित्यशः । स्थूललिङ्गमिदं पूर्णं स्नपयितुं न[९] शक्यते ॥२०॥

एतस्योपरि पुष्पाणि पुष्पोपरि ह्यहं सदा । प्रस्रवाम्यपि क्व क्षीरं नाऽहं जानामि तत्परम् ॥२१॥

लिङ्गस्य कोट्यधोभागे पाशुपतास्त्रमद्भुतम् । भ्रमन्ति कोटिशः संख्यास्तत्र गन्तुं क ईश्वरः ॥२२॥

रेणुरेकोऽपि तत्राऽज यद्यपि खलु गच्छति । तदस्त्रं हि भृशं ब्रह्मन् भेदयति सहस्रधा ॥२३॥

तदस्त्रशकलीभूतस्तद्रेणुर्व्योम्नि साम्प्रतम् । विलीयते समुद्धूय गन्तुं शक्तश्च तत्र कः ॥२४॥

अतिप्रियाणि पुष्पाणि बन्धूकं केतकी जपा[१०] । रुद्रस्यैतानि जानन्ति वृत्तान्तानि च कोटिशः ॥२५॥

---

ब्रह्माले भन्नुभयो – हामी सबैका शरीरमा सधैँ कुशल छ। खालि स्वर्गमा यी दुई शरीर अर्थात् ब्रह्मा र विष्णुको शरीर रित्तो भएको छ। हे कामधेनु ! म आउनाको मुख्य कारण सुन। जुन कारणले म यहाँ आएँ, त्यो कारण तिमीलाई बताउँछु। मन्वन्तरको अन्त्यमा कलियुग केही बाँकी रहेको अवस्थामा यस पृथ्वीलाई पानीले ढाक्यो र एउटै समुद्र बन्यो। त्यसै बेला एकान्तमा विष्णुसँग हाम्रो कुराकानी हुँदै थियो। हाम्रो सामु एउटा पूज्य लामो ज्योतिर्लिङ्ग खडा भयो। हेरेर बसिरहेका हामीलाई त्यस ज्योतिले सम्झायो। त्यसपछि विष्णु पातालतिर लाग्नुभयो र म यहाँ आएँ। ज्योतिर्लिङ्गको मूल हेर्ने मेरो इच्छा छ, अरू कुनै छैन। यसको टुप्पो मैले देखिनँ, कसरी पत्ता लगाउन सक्छु ? त्यो कुरा बताऊ ॥१२-१७॥

कामधेनुले भनिन् – यो शिवलिङ्गको टुप्पो कसै गरे पनि फेला पर्दैन। यसको फेद तथा टुप्पो थाहा पाउन कोही पनि समर्थ छैनन्। आद्य ईश्वर र देवताका नायकको अनादि लिङ्गलाई कसैले पनि जान्न सकेको छैन। म पनि यसलाई जान्न सक्दिन। सूक्ष्म लिङ्गमाथि सधैँ दूध पगारेर चढाउँछु। यो ठूलो ज्योतिर्लिङ्गलाई दूधले भिजाउँदैन। यसमा फूलहरू छन्, फूलमाथि मैले दूध सधैँ खन्याएको छु। त्यो दूध कहाँ जान्छ मलाई थाहा छैन। लिङ्गको टुप्पोभन्दा तल करोडौँ आश्चर्यजनक पाशुपत अस्त्रहरू छन्। करोडौँको सङ्ख्यामा तिनीहरू घुमिरहेका छन्। त्यहाँ जान को सक्छ र ?। हे ब्रह्मा ! एउटा कुनै धूलो मात्र त्यहाँ पुग्यो भने त्यस अस्त्रले त्यसलाई हजारौँ टुक्रा गरेर छिया छिया पार्छ। ती अस्त्रले टुक्रिएको त्यो धूलो आकाशमा उडेर बिलाउँछ भने त्यहाँ जान को सक्छ ? हे ब्रह्मन् ! यी बाह्रमासे जपा र केतकी नाम गरेका फूलहरूले रुद्रका सबै प्रिय वृत्तान्त जान्न सक्छन् ॥१८-२५॥

---

६. प्रेक्षन्तौ संस्थितावावां इति न.सं.पु.पाठः ।

७. मूलाग्रं दर्शितं कामं नान्यकामञ्च विद्धि न इति न.सं.पु.पाठः ।

८. प्रस्रवितुं न इति न.सं.पु.पाठः ।

९. इदं तु शिवलिङ्गं वै कथं न, इति न.सं.पु.पाठः ।

१०. बन्धूकः केतकी ब्रह्मन् तस्य प्रियाणि च इति न.सं.पु.पाठः ।

ब्रह्मोवाच

सत्यमुक्तं त्वया देवि कामधेनो न संशयः। अनृतं वचनं लोके न ब्रवीषि कदापि च ॥२६॥
किं पृच्छ्यते सुविज्ञेषु तद्वृत्तान्तं मुहुर्मुहुः। भवत्याऽत्र यदुक्तं तत् सर्वं सत्यं न संशयः[११] ॥२७॥
ईषत्कार्यं भवद्भिर्मे कर्त्तव्यमद्य विद्यते। बन्धूक केतकि श्रीमज्जपे गत्वा मया सह ॥२८॥

कामधेनुरुवाच

यथा रुद्रस्तथा विष्णुर्यथा विष्णुस्तथा विधिः। एका मूर्त्तिस्त्रयो देवा ब्रह्मविष्णुमहेश्वराः ॥३१॥
लिङ्गमूलं समन्वेष्टुमधो यातुहरेः पुरः[१२]। तात कथन्नु[१३] वक्तव्यं चाऽनृतं वचनं वद ॥३२॥
नानृतात्पातकं लोके महत्तरं हि विद्यते। पातकात्पतनं यावदर्केन्दुसागरा रसा ॥३३॥
अनृतात्पितरश्चाऽधः पतन्ति त्रिदिवादपि। तीर्थे क्षेत्रे सभायाञ्च धर्मदाने महत्सु च ॥३४॥
नानृताच्च महत्पापं स्वात्मा वेत्ति यथार्थतः[१४]। यो बोधयत्येवमात्मानं तदेव वञ्चयत्यज ॥३५॥
द्यौर्भूम्यब्जगत्प्राणा अर्केन्द्वग्निर्विभावरी। सन्ध्ये चेतो मन आत्मा तदंशा देवता विदुः ॥३६॥
प्राणिनां हृदये यत्तत्कृत्याकृत्यं शुभाशुभम्। जानन्ति व्यक्तमव्यक्तं तद् गोप्तव्यं कथं भवेत् ॥३७॥

ब्रह्मोवाच

मा शङ्कैवञ्च कर्त्तव्या सत्यानृतप्रयुक्तिषु[१५]। गोविप्राणां भयार्त्तानां रक्षणं शरणागते[१६] ॥३८॥
गुरूणां वचने चापि[१७] नानृतं किल पातकम्। अर्हणीयोपप्लवोद्धारे नानृतं पातकं भवेत्[१८] ॥३९॥

---

ब्रह्माले भन्नुभयो – हे कामधेनु गाई ! तिमीले साँचो कुरा भनेकी छ्यौ किनभने तिमी संसारमा कहिल्यै पनि भूटो बोल्दिनौ। हे केतकी ! उनीहरूको कुरा यिनीहरूलाई के सोध्नुपर्छ र ! तिमीले जे भन्यौ, त्यही सत्य हुन्छ। हे केतकी ! हे बन्धूक ! हे जपापुष्प ! तिमीहरूले मेरो साथमा गएर आज मेरो सानो काम गरिदिनुपर्‍यो। ब्रह्माजीले लिङ्गको टुप्पो भेट्टाउनुभयो, हे विष्णु ! करोडौं सङ्ख्यामा रहेका हामीले लिङ्गको टुप्पामा ब्रह्माजीलाई देख्यौं भन्ने कुरा त्यहाँ गएर तिमीले विष्णुलाई भनिदिनुपर्‍यो। अहिले नै मसित हिँड ॥२६–३०॥

कामधेनुले भनिन् – जस्तो शिव, उस्तै विष्णु र जस्तो विष्णु उस्तै ब्रह्मा हुनुहुन्छ। ब्रह्मा, विष्णु र शिवको एउटै रूप छ। हे ब्रह्माजी ! खासगरेर लिङ्गको पाताल भागतिर जाने विष्णुका अगाडि गएर असत्य कुरा कसरी बोल्ने ? विश्वमा असत्यभन्दा अर्को कुनै ठूलो पाप छैन। पापबाट सूर्य, चन्द्र, समुद्र र पृथ्वी रहेसम्म पतित भएर बस्नुपर्छ। भूटो बोल्यो भने पितृहरू पनि स्वर्गबाट तल गिर्छन्। तीर्थमा, पुण्यक्षेत्रमा, धर्मकर्ममा, दान दिँदा र ठूला मानिसहरू कुरा गर्दा असत्य बोल्यो भने त्यसभन्दा ठूलो अर्को कुनै पाप हुँदैन, यो कुरा आफैँलाई हुने गर्दछ। हे ब्रह्माजी ! जसले आफूले जान्दा जान्दै पनि असत्य व्यवहार गर्छ, त्यसले आफैँलाई ठगेको हुन्छ। आकाश, पृथ्वी, जल, वायु, सूर्य, चन्द्रमा, अग्नि, रात्री, दुई सन्ध्या, मन, मनमा विराजमान आत्मा र उसका अंश भएका देवताहरूले साक्षी बनेर सबै कुरा जान्दछन्। प्राणीको हृदयमा रहेको कर्तव्य, अकर्तव्य, शुभ तथा अशुभ व्यक्त होस् अथवा अव्यक्त, यिनीहरूले सबै थाहा पाएका हुन्छन्। त्यसलाई कसरी लुकाउन सकिन्छ र ? ॥३१–३७॥

ब्रह्माले भन्नुभयो – शरणमा आएका गाई, ब्राह्मण र भयभीतको रक्षा गर्नुपर्‍यो भने सत्य र असत्यलाई ठूलो बडो भन्ने शङ्का गर्नुहुँदैन। गुरुजनको आज्ञाअनुसार असत्य बोले पाप लाग्दैन। पूज्यजनलाई सङ्कटबाट रक्षा गर्दा बोलेको असत्यबाट पाप लाग्दैन ॥३८–३९॥

---

११. यदुक्तं भवता चात्र तदेव सत्यमेव च इति न.सं.पु.पाठः।
१२. अधः क्षिप्रं व्रजन् इति न.सं.पु.पाठः।
१३. कथञ्च इति न.सं.पु.पाठः।
१४. यथा चरम् इति न.सं.पु.पाठः।
१५. सत्यानृतं वरं महत् इति न.सं.पु.पाठः।
१६. गोविप्रान्सा भयार्त्तानां रक्षणे शरणागते इति न.सं.पु.पाठः।
१७. वचनाच्चापि इति न.सं.पु.पाठः।
१८. अर्हणीयापदुद्धारे नानृतात्पातकं लभेत् इति न.सं.पु.पाठः।

स्कन्द उवाच

इत्याकर्ण्य वचो धातुः पुष्पाणि सुरभिस्तदा। असत्यं भाषणं वक्तुं स्वीचक्रिरे तथाविधम् ॥४०॥
अवतर्त्तुञ्च गोलोकाद्यत्र वादः पुराऽभवत्। ब्रह्मणा सह चैतास्ता ययुः[१९] हिमाद्रिसानुनि ॥४१॥
विष्णुरपि ततो गत्वा समुत्तीर्य च षद्दलम्। महातलस्य शेषे च ददर्शानन्तपन्नगम् ॥४२॥
आरक्तविग्रहं शुभ्रं शङ्खाब्जकृतलाञ्छनम्। सुन्दरास्यं महाभोगमीषत्प्रहसिताननम् ॥४३॥
सहस्रवदनं कण्ठेऽयुताहिभिः संवृतम्[२०]। मणिभी राजमानाङ्गं मणिमयगृहोत्तमे ॥४४॥
पूजयन्तं महालिङ्गं तेजःपुञ्जं महोत्सवैः। स्वात्मानं हि महानन्तं धारयन्तं महातले[२१] ॥४५॥
सोपि सत्कृत्य तं विष्णुं प्रणम्यात्मसुभावतः। जानन्नपि तदेकाङ्गं तत्रागतं हरिं मुने।
सम्पूज्य विधिवद् भक्त्या चोपवेश्य समासने। व्याजहार शुभं वाक्यं स्मिताननो नमन्मुदा ॥४६॥

अनन्त उवाच

भो भूमन्स्वागतं विष्णो लोकानां सर्वप्राणिनाम्[२२]। कुशलमस्ति वो देहे विश्वपाज दयाकर ॥४७॥
अत्र चाऽऽगमने कार्यं वक्तव्यमधुना विभो। अहं भवान् भवाँश्चाऽहं[२३] न भेदोऽस्त्यावयोर्विभो ॥४८॥
एकांशोऽहं सहस्राणां भूमन्ते पुरुषस्य च। गोचरतां गतो भूमन् चक्षुषोरप्यगोचरः ॥४९॥
महद्भाग्यं परं मेऽद्य किं विधेयमतः परम्। विष्णवे व्याप्तदेवाय सर्वभूतदयाय च।
योगेश्वराय योगाय प्रणतोऽस्मि नमो नमः ॥५०॥

---

कार्तिक स्वामीले भन्नुभयो – ब्रह्माजीको यस्तो कुरा सुनेर फूलहरू र कामधेनु गाईले त्यसबेला जस्तो कुरा भयो, त्यसै अनुरूप असत्य बोल्न स्वीकार गरे। जहाँ अघि विवाद भएको थियो, त्यसै गोलोकमा ओर्लनका लागि ब्रह्मासँगै कामधेनु गाई र ती पुष्पहरू हिमालयको शिखरमा गए ॥४०–४१॥

उता विष्णुले पनि त्यहाँबाट गएर छवटा लोक पार गरे। महातलको अन्त्यमा पुग्दा उनले अनन्त नागलाई भेट्टाए। अनन्त नाग सेता, शरीरमा अलिअलि राता रङ्ग भएका थिए। शङ्ख र कमलले उनको शरीर अङ्कित थियो, मुख ज्यादै सुन्दर र शरीर विशाल थियो, मुहार केही हँसिलो थियो। तेजिलो महालिङ्गको ठूलो उत्सवका साथ पूजा गर्ने आफूभन्दा ठूलो महातललाई धारण गर्ने अनन्तले विष्णुको सत्कार गरे। आफ्नो सदाशयताले गर्दा उनलाई विष्णुले प्रणाम गरे। विष्णुभन्दा आफू अभिन्न हुँ भन्ने जानेर पनि त्यहाँ आएका विष्णुको विधिपूर्वक सभक्ति उनले पूजा गरे, आसनमा बसाले, मुसुक्क हाँसेर सहर्ष नम्र हुँदै उनी भन्न लागे ॥४२–४७॥

अनन्तले भने – हे पूज्य विष्णु ! हजुरलाई स्वागत छ। हे दयालु ! सबैका संरक्षक भगवान् ! लोकमा बस्ने सबै प्राणीहरूलाई र हजुरलाई पनि कुशलै छ ?। हे प्रभु ! अहिले यहाँसम्म आउने के काम पर्‍यो ? मलाई बताइदिनुहोस्। हामी दुईका बीचमा कुनै भेद छैन। हजुर नै म र म नै हजुर हौँ। हे विष्णु ! हजुरका हजार अंशको एक अंश म हुँ। आँखाले देख्न नपाइने हजुरलाई मैले आज देख्न पाएँ। आज मेरो ठूलो भाग्य रहेछ। यसभन्दा अरू म के भन्न र गर्न सक्छु र ? सर्वत्र संसारमा व्याप्त हुनहुने सम्पूर्ण प्राणीमा दया गर्नुहुने योगका ईश्वर एवं स्वयं योगस्वरूप सर्वव्यापक विष्णुको शरणमा परी म बारम्बार नमस्कार गर्दछु ॥४८–५०॥

---

१९. सहसा तानि ययौ इति न.सं.पु.पाठः।
२०. दिव्यमयुताहिर्गलैर्वृतम् इति न.सं.पु.पाठः।
२१. महातलं दधानकम् इति न.सं.पु.पाठः।
२२. सर्वजीविनाम् इति न.सं.पु.पाठः।
२३. न मे भवान्भवान् चाहम् इति न.सं.पु.पाठः।

विष्णुरुवाच

अभिनन्दामि हे श्रीमन्ननन्त[२४] नागराड् भुवः । जलेनाच्छादिता भूमिः सर्वलोकैर्विवर्जिता ॥५१॥

अत्राऽऽगमनकार्यं मे शृण्वनन्तोरगेश्वर । तेजःतम्भस्य मूलं हि द्रष्टुकाम इहागतः ॥५२॥

नागराज उवाच

जानन्नपि महाविष्णो कथं प्राकृततां गतः । न स्तम्भोऽयं हरेर्धीमन् तेजोलिङ्गमिदं शिवः[२५] ॥५३॥

एतल्लिङ्गस्य मूलं को वेत्तुं भवति सम्प्रभुः[२६] । अनादिरिह देवोऽसौ प्रभो भूतगुणाशयः ॥५४॥

लिङ्गमूलं वेष्टयन्तः कोटिनागा महातले[२७] । प्रतिष्ठन्ति महाकायाः सर्वलोकभयप्रदाः ॥५५॥

यत्रैकस्याऽपि[२८] तस्याऽहेरेकोच्छ्वासबलात् सकृत् । दशयोजनदूरस्था उद्धूयन्ते हि प्राणिनः[२९] ॥५६॥

एतल्लिङ्गस्य मूलं वै को गच्छति विभो वद । विनाशायात्मनो विष्णो ऋते मूर्ख न चापरः[३०] ॥५७॥

यतः समागतो विष्णो तत्रैव प्रतिगम्यताम् । स्वयं शिवात्मकं लिङ्गं मायाधारं किमिच्छसि ?[३१] ५८॥

स्कन्द उवाच

इत्याकर्ण्य वचो विष्णुरनन्तस्य मुखाच्च्युतम् । तथ्यं कृत्वा ततोऽगस्त्य प्रत्याययौ रसातलम् ॥५९॥

यत्र पुराभवद्वादो यत्र स्थितः पितामहः । समपूर्णप्रतिज्ञोऽसौ प्राप्तवाँस्तत्र सात्त्विकः ॥६०॥

ददर्श स हरिस्तत्र जलोपरि रसातले । ब्रह्माणञ्चैव पुष्पाणि कामधेनुं तथा पुनः ॥६१॥

तदन्तिके गतो विष्णुर्यत्र स्थितो विधिर्मुने । कामधेनुप्रसूनैश्च परिवृतो मुदान्वितः ॥६२॥

ब्रह्माऽपि तमभिप्रेक्ष्य समुत्तस्थौ हि स्वासनात्[३२] । सत्कृत्य पूजनैर्मान्यं व्याजहार स्मितं वचः ॥६३॥

---

विष्णुले भन्नुभयो – हे नागराज ! हे अनन्त ! तपाईंको अभिनन्दन गर्छु । सम्पूर्ण प्राणीले रहित भएकी भूमि अहिले पानीले ढाकिएकी छन् । हे अनन्त ! हे नागराज ! म यो तेजिलो लिङ्गको फेद कहाँसम्म पुगेको छ, हेरौं भनेर यहाँ आएको हुँ ॥५१–५२॥

नागराजले भन्नुभयो – हे महाविष्णु ! जानी जानीकन पनि हजुर साधारण पुरुषजस्तो किन हुनुभएको छ ? यो त महेश्वरको तेजोमय व्यापक लिङ्गस्तम्भ हो । यस लिङ्गको फेद कसले पत्ता लगाउन सक्छ ? हे प्रभु ! प्राणी र प्रकृतिमा आश्रित भएको यो लिङ्ग अनादि छ । महातलमा यस लिङ्गको फेदलाई करोडौं नागले बेरेर राखेका हुन्छन् । त्यहाँ सबै प्राणीहरूलाई त्रास पैदा गर्ने खालका ठूलो शरीर भएका नागहरू बस्छन् ॥ ती नागहरूमा कुनै एक नागले एकपटक फुङ्कार गर्दा प्राणीहरू दश योजन टाढा पुग्छन् । हे प्रभु ! आत्महत्या गर्न चाहने व्यक्ति बाहेक अरू को यस लिङ्गको फेदमा जान सक्छ ? हे विष्णु ! जहाँबाट आउनुभएको हो, त्यसै ठाउँमा फर्कनुहोस् । यो साक्षात् शिवको मायाद्वारा अडिएको लिङ्ग हो । तपाईं अरू के चाहनुहुन्छ ? ॥५३–५८॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! अनन्तको मुखबाट निस्किएको यो कुरा सुनेर ठीकै हो भन्ने ठानी विष्णु पृथ्वीमा फर्कनुभयो । जहाँ अघि विवाद भएको थियो, त्यहाँ ब्रह्माजी हुनुहुन्थ्यो, त्यसै ठाउँमा आफ्नो प्रतिज्ञा पूरा गर्न असमर्थ भएका सात्त्विक गुणले युक्त भगवान् विष्णु पुग्नुभयो ॥५९–६०॥

भगवान् विष्णुले पृथ्वीमा पानीमाथि बसेका ब्रह्मा, फूलहरू र कामधेनु गाईलाई देख्नुभयो । त्यसपछि विष्णु कामधेनु गाई र फूलहरूको बीचमा आनन्दसित बस्नुभएको ब्रह्माजीको नजिकै जानुभयो । उहाँलाई देखेर ब्रह्मा पनि आफ्नो आसनबाट उठ्नुभयो र विष्णुको पूजा गर्दै उहाँले मीठो बोलीमा भन्नुभयो ॥६१–६३॥

---

२४. स्वागतं वै मयैतस्मिन्, इति न.सं.पु.पाठः
२५. विधिस्त्वञ्च तेजोलिङ्गो महेश्वर इति न.सं.पु.पाठः ।
२६. यः कः प्रभुर्वेत्ति विद्यते इति न.सं.पु.पाठः ।
२७. एतल्लिङ्गस्य मूलं हि कोटिनागाः प्रवेष्टयन् इति न.सं.पु.पाठः ।
२८. य एकस्यापि इति न.सं.पु.पाठः ।
२९. दशयोजनदूरस्थात् चोद्धयन्ति च जीविन इति न.सं.पु.पाठः ।
३०. विना स्वाङ्गं हि कोऽपरः
३१. जानन् स्वयं शिवात्मापि मायामिच्छसि चैश्वरीम् इति न.सं.पु.पाठः ।
३२. उदतिष्ठन्निजासनात् इति न.सं.पु.पाठः ।

ब्रह्मोवाच

स्वागतं हि हरे तस्मान् महातलात्स्वयं विभो। अत्राऽऽगतोऽसि चैकाकी साक्षी कोऽपि न विद्यते ॥६४॥
यदर्थं भवता तत्र गतं तूर्णं रसातलम्। किं कार्यञ्चैव[३३] निष्पन्नमुच्यतां वै हरेऽधुना ॥६५॥

विष्णुरुवाच

असमर्थोऽप्यहं द्रष्टुं तन्मूलञ्च पितामह। चित्रं तन्मूलपारं वै गन्तुं तत्र न शक्यते ॥६६॥
न दृष्टं हि मया ब्रह्मन् तन्मूलं हि महातले। न दृष्टं स्तम्भमूलं तत्[३४] सत्यं सत्यं वदाम्यहम् ॥६७॥
भवता चैव दृष्टस्तदग्रभागः[३५] पितामह। तव लोकादिसर्वोर्ध्वे प्रोच्यतां हि ऋतं ध्रुवम् ॥६८॥

ब्रह्मोवाच।

दृष्टं वाथ मयाऽदृष्टं पुष्पाण्येतानि पृच्छ्यताम्। पृच्छ्यतामत्र[३६] तद्वार्तां कामधेनूरसौ ह्यपि ॥६९॥
दृष्टे साक्षिणि धीमाँश्च वदेत् स्वयं कदापि न। एतेभ्यः शृणु चैतस्या विष्णो वार्तां यदृच्छया[३७] ॥७०॥

विष्णुरुवाच

सुपात्रे कर्त्तरि प्राप्ते नास्ति साक्षिप्रयोजनम्। धीमान्मिथ्या कदाप्यार्य न वदेत्स्वात्मने परैः ॥७१॥
संसदि यो वदेन्मिथ्यां ज्ञात्वा कर्म स्वमात्मनः। परस्मै चाऽऽत्मने वाऽपि स भुङ्क्ते किल्विषं जनः[३८] ॥७२॥
कार्यविद्यो वदेन्मिथ्यां पक्षाश्रयी परीक्षकः। समवायप्रवेत्ताऽपि चाऽक्षयपापभुग्भवेत् ॥७३॥
सभायां पक्षपाती चेद्धीमानपि परीक्षकः। अष्टैश्वर्यञ्च लब्ध्वाऽपि[३९] सोऽक्षयं नरकं व्रजेत् ॥७४॥
तथापि क्रियते प्रश्नस्तत्ते वचनगौरवात्। एतस्याञ्च तथैतेषु त्वत्प्रवृत्तौ[४०] पितामह ॥७५॥
कामधेनो जपापुष्प बन्धुक केतकि ध्रुवम्। दृष्टं वाऽनेन तत्कूटं यूयं ब्रूथ ऋतं द्रुतम्[४१] ॥७६॥

---

हे विष्णु ! तपाईंलाई स्वागत छ, महातलबाट एक्लै आफू आउनुभएको छ, के साक्षी कोही पनि छैन ? हे विष्णु ! जुन कामका लागि तपाईं छिटो–छिटो पातालतिर जानुभएको थियो त्यो काम पूर्ण गरी आउनुभयो कि भएन? भन्नुहोस् ॥६४–६५॥

विष्णुले भन्नुभयो – हे ब्रह्मन् ! मैले त्यस लिङ्गको फेद फेला पार्न सकिनँ। त्यो फेदमा पुग्न सकिँदो रहेनछ, मलाई आश्चर्य लाग्यो। हे ब्रह्मा ! मैले महातलसम्म पुग्दा पनि त्यस लिङ्गको फेद फेला पारिनँ। म सत्य सत्य तपाईंलाई बताउँछु। हे ब्रह्मा ! तपाईंले आफ्नो लोक र अरूलोकभन्दा माथि त्यसको टुप्पो देख्नुभएको भए साँचो बताइदिनुहोस् ॥६६–६८॥

ब्रह्माले भन्नुभयो – मैले त देखें कि देखिनँ, यिनै केतकी आदि फूलहरूलाई सोध्नुहोस्। यी कामधेनु गाईसित पनि कुराकानी गर्नुहोस्। बुद्धिमान्ले साक्षी देखाएपछि आफू अगाडि सरेर बोल्दैन। हे विष्णु ! यिनीहरूबाट सबै कुरा सुन्नुहोस् ॥६९–७०॥

विष्णुले भन्नुभयो – कर्ता सुपात्र छ भने त्यसलाई साक्षीको कुनै आवश्यकता पर्दैन। हे आर्य ! तपाईंजस्तो बुद्धिमान्ले आफ्ना निमित्त अरूसँग कहिल्यै झूटो बोल्दैनन्। आफूलाई थाहा हुँदाहुँदै पनि सभामा आफ्ना लागि अर्कोसँग जसले असत्य बोल्छ त्यसले पापको भारी बोक्नैपर्छ ॥७१–७२॥

जुन नारीले जानी जानीकन झूटो बोल्छ, वकीलले परीक्षक भएर पक्षपात गर्छ र न्यायाधीशले पनि पक्षपात गर्छ भने सबै कुरा जाने तापनि त्यसले कहिल्यै नाश नहुने पापको भोग गर्नुपर्छ। हे ब्रह्मा ! बुद्धिमान् भएर जुन परीक्षकले सभामा पक्षपात गर्छ, आठै ऐश्वर्यले युक्त भएता पनि त्यो कहिल्यै मुक्ति नपाउने नरकमा गएर पर्छ। हे ब्रह्मा ! तपाईंको बोलीलाई सम्मान गर्दै तैपनि यिनीहरूसँग ज्योतिर्लिङ्गको विषयमा म प्रश्न सोध्छु। हे कामधेनु ! हे जपाफूल ! हे बन्धूक ! हे केतकी ! साँचो कुरा भन। के ब्रह्माले ज्योतिर्लिङ्गको टुप्पो देख्नुभएको हो ? ॥७३–७६॥

---

३३. तदर्थञ्चैव इति न.सं.पु.पाठः।
३४. तददृष्टे हि तस्यैव इति न.सं.पु.पाठः।
३५. दृष्टं तदग्रभागम् इति न.सं.पु.पाठः।
३६. भवतामत्र इति न.सं.पु.पाठः।
३७. विष्णो चैतेषु चैतस्यां शृणु तां तां यदृच्छया इति न.सं.पु.पाठः।
३८. स किल्विषं प्रभुञ्जते इति न.सं.पु.पाठः।
३९. प्राप्ते चाष्टैश्वरे ब्रह्मन् इति न.सं.पु.पाठः।
४०. प्रवृत्तं हि इति न.सं.पु.पाठः।
४१. विभो इति न.सं.पु.पाठः।

कामधेनुरुवाच

शेखरञ्च गतं सत्यमेतस्य ब्रह्मणा विभो। समागत्य ततः सार्द्धमनेनैवमिहागताः ॥७७॥

केतक्युवाच

सत्यमुक्तं हरे चाऽत्र कामधेन्वा न संशयः। तत्र प्राप्तो विधिर्दृष्टोमया च स्तम्भशेखरे[४२] ॥७८॥

बन्धूकमुवाच

स्थित्वा तच्छेखरे विष्णो ताभ्यामपि मया सह। लिङ्गकूटे विधिर्दृष्टो मया तत्र[४३] न संशयः ॥७९॥

जपापुष्पमुवाच

आगतो हि विधिस्तत्र लिङ्गस्यैतस्य शेखरे[४४]। मयाऽपि च हरे दृष्टः[४५] सत्यमेतन्न संशयः ॥८०॥

स्कन्द उवाच

एवं विकत्थिते विष्णुरधोमुखो बभूव ह। तन्मायामोहितो मत्वा तमेव चात्मनः परम् ॥८१॥

अधोमुखे कृते विष्णौ दूयमाने मुने हृदि। व्याजहारेश्वरो व्योम्नो भूयः पुरा यथा वचः ॥८२॥

अलक्ष्य उवाच

विष्णो नु मा विषादं त्वं गच्छाऽतिवितथोदिते। सुरभेश्चैव पुष्पाणां मध्यस्थो[४६]ऽसत्यसाक्षिणाम् ॥८३॥

वितथं कामधेनो हि त्वयाऽप्युक्तं ममाग्रतः। भूत्वा कामप्रदा लोके त्रैलोक्यपावनी सती ॥८४॥

भूत्वाऽसत्यसाक्षिणी त्वं ब्रूषेऽसत्यं गतत्रपा[४७]। तस्मात्त्वं सती चाद्यादि भवास्पृश्या मुखेन च[४८] ॥८५॥

---

कामधेनुले भनिन्– ब्रह्मा ज्योतिर्लिङ्गको टुप्पामा पुगेर आउनुभयो। हामी पनि ब्रह्मासँगै यहाँ आएका हौँ ॥७७॥

केतकीले भन्यो – हे हरि ! कामधेनुले जे कुरा भनिन्, त्यसमा कुनै शङ्का छैन। त्यहाँ पुगेका ब्रह्मालाई मैले पनि टुप्पामा देखेको थिएँ ॥७८॥

बन्धूक फूलले भन्यो – हे विष्णु ! उनीहरूसँगै मैले पनि ज्योतिर्लिङ्गको शिखरमा पुगेका ब्रह्मालाई देखेको थिएँ, यसमा सन्देह छैन ॥७९॥

जपाफूलले भन्यो – यस शिखरमा आएका ब्रह्माजीलाई मैले पनि देखेको थिएँ। हे विष्णु ! यसमा शङ्का छैन ॥८०॥

कार्तिक स्वामीले भन्नुभयो – यसरी कामधेनु, बन्धूक र जपाफूलले झूठो जवाफ दिएपछि भगवान् विष्णुले आफूलाई नै ठूलो बनाउने इच्छा लिएका ब्रह्मालाई ईश्वरीय मायाबाट मोहित भएको ठान्नुभयो र निहुरिमुन्टो लाउनुभयो। उहाँ खिन्न हुनुभयो। त्यसै बखतमा अघिजस्तै गएर आकाशबाट ईश्वरीय वाणी प्रकट भयो ॥८१–८२॥

अलक्ष्य भगवान्ले भन्नुभयो – हे विष्णु ! झुट्ठा साक्षीहरूको बीचमा रहेका तिमीले यिनीहरूको अत्यन्त असत्य कथनमा खिन्न हुनपर्दैन। यस कुराको सत्य साक्षी तिमी छौ। हे कामधेनु ! तीनै लोकलाई पवित्र तुल्याउने र इच्छाअनुसारको फल दिने सती भएर पनि मेरा अगाडि तिमीले झूटो बोल्यौ। झूटो साक्षी भएर नदेखेको कुरा तिमीले जो गर्‍यौ, त्यसैले गर्दा आजदेखि पवित्र भएर पनि तिम्रो मुख अपवित्र हुनेछ ॥८३–८५॥

---

४२. तत्रागतं विधिं तस्य दृष्टम् इति न.सं.पु.पाठः।

३३. तत्रागतं विधिं दृष्टमपि चैतत् इति न.सं.पु.पाठः।

४४. भागत्र हि विधिं चैतल्लिङ्गस्य शेखरे इति न.सं.पु.पाठः।

४५. दृष्टम् इति न.सं.पु.पाठः।

४६. मध्यस्थ इति न.सं.पु.पाठः।

४७. भूत्वा वितथसाक्षी यददृष्टं कथितं स्वयम् इति न.सं.पु.पाठः।

४८. मुखेन चास्पृशा भव इति न.सं.पु.पाठः।

बन्धूक केतकि श्रीमज्जपेऽविचारतोऽधुना। युष्माभिर्वितथं प्रोक्तं भूत्वा तत्पक्षिणोऽत्र वै ॥८६॥
एतावत्समयं यावदभूत मत्प्रिया[४९] भृशम्। यावन्नोक्तमसत्यञ्च युष्माभिर्मम सन्निधौ[५०] ॥८७॥
अद्यादि मम यूयञ्च निर्माल्यानि भवेत वै[५१]। वितथकथनाद्युष्मान्न स्पृशेऽहं कदापि हि ॥८८॥
अद्यप्रभृति प्रारम्भे[५२] यश्चार्चिष्यति मां सदा। युष्मत्पुष्पैश्च मूर्खोऽसौ भवेन्ममापराधकृत् ॥८९॥

स्कन्द उवाच

एवमुक्त्वा ह्यलक्ष्योऽसौ तत्रैवान्तर्दधेऽम्बरे। दत्त्वा शापं पुनस्तेभ्यः श्रावयन् तांश्च गां मुने ॥९०॥
आकर्ण्य वाचं गिरिशस्य तथ्यां विष्णुश्च धाता बुबुधे तदा वै।
तञ्चेश्वरेशं परमानतौ तौ मायाविमुक्तौ मुदमाप्तवन्तौ ॥९१॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे ज्योतिर्लिङ्गोत्पत्तिर्नाम पञ्चसप्ततितमोऽध्यायः ॥७५॥

---

हे बन्धूक ! हे केतकी ! हे जपा ! तिमीहरूले पनि पक्षपात गरेर विचारै नगरीकन असत्य बोल्यौ। जहाँसम्म तिमीहरूले असत्य बोलेका थिएनौ, त्यहाँसम्म निश्चय नै तिमीहरू मेरा अत्यन्त प्यारा थियौ। आजदेखि तिमीहरू सधैं मेरो निर्माल्य बन। झूटो बोलेको हुँदा तिमीहरूलाई म कदापि छुनेछैन। आजदेखि पूजाको प्रारम्भिक चरणमा तिमीहरूको फूल चढाएर जसले मेरो पूजा गर्छ त्यो मूर्ख मेरा लागि अपराधी हुनेछ ॥८६-८९॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! यति भनेर अलक्ष्य भगवान् तिनीहरूलाई सरापका वचन सुनाउँदै फेरि आकाशमा अन्तर्धान हुनुभयो। अलक्ष्यको यथार्थ कुरा सुनेर ब्रह्मा र विष्णु भगवान्ले वास्तविक कुरा बुझे। ईश्वरको मायाबाट मुक्त भएर आनन्दित हुँदै उनीहरूले परमेश्वरलाई प्रणाम गरे ॥९०-९१॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा ज्योतिर्लिङ्गको उत्पत्तिनामक पचहत्तरौं अध्याय पूरा भयो।

---

४९. अतिप्रियतामा यूयमेतावदभवन्, इति न.सं.पु.पाठः।
५०. युष्माभिर्ननु मेऽत्र वै, इति न.सं.पु.पाठः
५१. निर्माल्या भवताऽनिशम् इति न.सं.पु.पाठः।
५२. आरम्भे इति न.सं.पु.पाठः।

# षट्सप्ततितमोऽध्यायः

ईश्वरोपदेशः

स्कन्द उवाच

सुविस्मयं तदा देवौ प्राप्तौ भृशं घटोद्भव । तेजःस्तम्भमभिप्रेक्ष्य चाऽऽकर्ण्य तदुदीरितम् ॥१॥
संस्मरतुस्तदा देवौ रुद्रं विष्णुपितामहौ । सर्वात्मानं महेशानं प्रबोधार्थं मुदाऽऽत्मनः ॥२॥
स्तोतुं प्रचक्रतुर्देवौ चेश्वराय मुदाऽन्वितौ । संविधायाऽञ्जलिं मूर्ध्नि त्रिविधाभिश्च भक्तिभिः[1] ॥३॥

ब्रह्मविष्णू ऊचतुः

ॐ ज्योतीरूपाय रुद्राय ज्योतिषाम्पतये नमः । तेजःस्तम्भात्मनेऽजाय श्रीश्वराय नमो नमः ॥४॥
अव्यक्ताय च लिङ्गाय व्यक्तलिङ्गाय ते सताम्[2] । व्यक्ताव्यक्तस्वरूपाय सर्वेश्वर नमोऽस्तु ते ॥५॥
आद्याय समनाद्याय चान्तस्थाय नमो नमः । अन्तश्चराय भक्तानां व्यञ्जनाय नमो नमः ॥६॥
ये त्वां शम्भुं न जानन्ति[3] त एव पशवः स्मृताः । पशूनां पतये तेषां तुभ्यं देव नमोऽस्तु ते ॥७॥
क्षितिरूपाय रुद्राय घ्राणांशाय नमो नमः । जलरूपाय चोग्राय रसांशाय नमो नमः ॥८॥
तेजोरूपाय भर्गाय चक्षुरंशाय वै नमः । वायुरूपाय भीमाय श्रोत्रांशाय ते नमः ॥९॥
व्योमरूपाय चेशाय कण्ठांशाय नमो नमः । व्योमातीताय देवाय महाव्योम्ने च ते नमः ॥१०॥
अव्यक्तशब्दरूपाय व्यक्तशब्दाय ते नमः । अनाहतनिनादाय कारणध्वनिने नमः ॥११॥

---

## अध्याय – ७६

### ब्रह्मा र विष्णुलाई ईश्वरको उपदेश

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! त्यसबेला सबै देवताहरू तेजको स्तम्भलाई देखेर अनि सबै घटना सुनेर अत्यन्त आश्चर्यचक्ति भए । त्यसपछि हर्षले युक्त भई ब्रह्मा तथा विष्णु दुबैले सबैका आत्मास्वरूप महेश्वरबाट उपदेश प्राप्त गर्नका लागि हात जोडेर शिर झुकाई तीनै किसिमको भक्तिले युक्त भएर शिरमा अँजुली राखी स्तुति गरे ॥१–३॥

ब्रह्मा र विष्णुले भने – ज्योतिरूप भएका, ज्योतिहरूका पनि मालिक भएका, स्तम्भाकारको तेज भएका, कसैले पनि जित्न नसक्ने ईश्वरलाई बारम्बार नमस्कार छ । अव्यक्त लिङ्गरूप भएका, भक्तहरूका अगाडि व्यक्त रूप लिएको लिङ्ग धारण गर्ने, त्यसैले व्यक्त पनि अव्यक्त पनि स्वरूप भएका हे सर्वेश्वर ! हजुरलाई नमस्कार छ । आद्य, अनाद्य र अन्तस्थ रूप भएका ईश्वरलाई बारम्बार नमस्कार छ । भित्रभित्रै कसैले नदेख्ने गरी हिँड्ने तथा भक्तहरूका सामु बाहिर व्यक्त हुने ईश्वरलाई बारम्बार नमस्कार छ ॥४–६॥

कल्याणदाता तपाईंलाई जसले जान्दैनन्, ती पशु हुन् । त्यस्ता पशुका पनि स्वामी हे भगवन् ! हजुरलाई नमस्कार छ । भूमिरूप, रुद्ररूप, नाकले गन्ध सुँघ्न सक्ने शक्तिरूप, जलरूप, उग्ररूप र रसांशरूप भएका हजुरलाई बारम्बार नमस्कार छ । तेजको रूप लिने, आँखाको अंशस्वरूप ज्योतिलाई नमस्कार छ । वायु, भीम र कर्णेन्द्रियको रूप लिने हजुरलाई नमस्कार छ । आकाशस्वरूप भएका, कण्ठका अंश ईश्वरलाई बारम्बार नमस्कार छ । आकाशभन्दा पनि पर रहेका महाकाशका रूपमा रहने देवता हजुरलाई नमस्कार छ । अस्पष्ट र स्पष्ट शब्दरूप हजुरलाई नमस्कार छ । अनाहत चक्रको आवाजको कारणरूप ध्वनिका रूपमा रहनुहुने ईश्वरलाई नमस्कार छ ॥७–११॥

---

१. त्रिविधैर्भक्तिपूर्वकम् इति न.सं.पु.पाठः ।
२. व्यक्तलिङ्गाय भक्तिनाम् इति न.सं.पु.पाठः ।
३. न जानन्ति च ये त्वां शुम् इति न.सं.पु.पाठः ।

पराय परमेशाय परापराय वै नमः। परापरप्रतीताय जीवानां[४] परमात्मने ॥१२॥
आनन्दाय तथैकाय सच्चिदानन्दरूपिणे। निरानन्दाय नन्दाय लिङ्गाय नन्दिने नमः ॥१३॥
प्रणवाय स्वरांशाय श्रुतये नादरूपिणे। मूलरूपत्रिमात्राय मूलताराय वै नमः ॥१४॥
प्रमोहिता ये वत[५] देवमायया त्वदीयया त्वां न भजन्ति सन्ततम्।
प्रबोधयावामनुकम्पया ते[६] कटाक्षपीयूषसुधारयाधुना ॥१५॥

स्कन्द उवाच

आकर्ण्य तत्स्तवं रुद्रो ब्रह्मविष्णुमुखोद्भवम्। देवेश्वरः सुसन्तुष्टस्ताभ्यां लिङ्गमदर्शयत्[७] ॥१६॥
तेजःस्तम्भान्तरालेऽजौ ददृशतुः परं सुरौ। लिङ्गमध्यगतं लिङ्गस्थितं प्रादेशसम्मितम् ॥१७॥
नैव तत्काञ्चनं रौप्यं ताम्रस्फटिकमौक्तिकम्। ज्योतिर्मात्रं स्थितं शान्तं केवलं तच्छिवात्मकम् ॥१८॥
भूयस्तुष्टुवतुर्लिङ्गं विष्णुपितामहौ तदा। अव्यक्तं परमं दिव्यमभिप्रेक्ष्य घटोद्भव ॥१९॥
ॐ नमो लिङ्गदेवाय भीमरूपाय शूलिने। नमः पराय लिङ्गाय पशूनां पतये नमः ॥२०॥
नमो देवाधिदेवाय सर्वदेहश्रिताय च। व्रजामः शरणं त्वां नो रक्ष रक्षेश ते नमः ॥२१॥
भूयो ददृशतुस्तौ तं लिङ्गमध्ये व्यवस्थितम्। प्रकृत्या सह संयुक्तं चित्ररूपं महोज्ज्वलम् ॥२२॥
चतुर्भुजं वरैकास्यं दिव्याननं त्रिलोचनम्। व्याघ्राम्बरधरं देवं नागयज्ञोपवीतिनम् ॥२३॥
नागकुण्डलदिव्याङ्गं नागकेयूरमण्डितम्। जटामुकुटं बिभ्राणं ललाटचन्द्रप्रोज्ज्वलम् ॥२४॥
त्रिशूलं डमरुं बाणं चापं दधानमीश्वरम्। गणेन शक्तिमालिङ्ग्य भ्राजमानं समन्ततः ॥२५॥

---

सबैभन्दा श्रेष्ठ परमेश्वर तथा परापर रूप लिने, जीवहरूले पर तथा अपरका रूपमा बुझ्ने परमेश्वरलाई नमस्कार छ। आनन्दस्वरूप भएका, एउटै सच्चिदानन्दस्वरूप निरानन्द तथा आनन्दमय लिङ्गरूप लिने नन्दीलाई नमस्कार छ। ॐकार, स्वरको अंश, वेदस्वरूप भएका, शब्दरूप, मूलरूप, त्रिमात्र मूलतारालाई नमस्कार छ। हे भगवन्! हजुरको मायाले मोहित भएका व्यक्तिहरूले हजुरको कहिल्यै पनि भजन गर्दैनन्। तिनीहरू समेत हामी दुबैलाई लाई कृपामय अमृतदृष्टिको धारा बर्साएर सम्झाउनुहोस् ॥१२–१५॥

कार्तिक स्वामीले भन्नुभयो – त्यसपछि ब्रह्मा र विष्णुको मुखबाट निस्किएको यो स्तुति सुनेर भगवान् महेश्वर प्रसन्न हुनुभयो र तिनीहरूलाई आफ्नो ज्योतिर्लिङ्ग देखाइदिनुभयो। अजन्मा ब्रह्मा र विष्णुले अविनाशी शङ्करको स्तम्भको माझमा रहेको तेजोमय एक कुरेत लामो लिङ्ग देखे। त्यो लिङ्ग सुन, चाँदी, स्फटिक, मोती केहीको पनि थिएन, त्यो त ज्योतिस्वरूप, शान्त र केवल शिवात्मक थियो। हे अगस्त्य मुनि! फेरि विष्णु र ब्रह्माले अव्यक्त, दिव्य त्यस लिङ्गलाई देखेर स्तुति गरे। डरलाग्दा त्रिशूल लिने शिवजीको लिङ्गस्वरूप देवतालाई नमस्कार छ। उत्तम लिङ्गस्वरूप भएका पशुपतिलाई नमस्कार छ। देवताका पनि देवता र सम्पूर्ण प्राणीमा रहने ईश्वरलाई नमस्कार छ। हामी तपाईंको शरणमा परेका छौं। हाम्रो रक्षा गर्नुहोस्, रक्षा गर्नुहोस्। हे ईश्वर! हजुरलाई नमस्कार छ ॥१६–२१॥

त्यसपछि फेरि ती दुई देवताले लिङ्गको बीचमा प्रकृतिसँग रहेको विचित्र किसिमको अत्यन्त उज्वल स्वरूपलाई देखे। त्यहाँ चार हात भएका, एक मुख तथा तीन आँखा भएका, बाघको छाला र नागको जनै लगाएका दिव्य पुरुषलाई उनीहरूले देखे। सुन्दर शरीरमा नागकै कुण्डल लगाएका, नागकै कल्किले शोभायमान जटा भएको मुकुट लगाएका निधारमा सुन्दर चन्द्रमाले युक्त भएका पुरुषलाई उनीहरूले देखे।हातमा त्रिशूल, डमरु, बाण तथा धनुष लिएका, शक्तिलाई आलिङ्गन गरेर चारैतिर गणका साथ सुशोभित भएका ईश्वरलाई उनीहरूले देखे ॥२२–२४॥

---

४. जीविनाम् इति न.सं.पु.पाठः।
५. तव इति न.सं.पु.पाठः।
६. प्रबोधयावानुककम्पया हि ते इति न.सं.पु.पाठः।
७. लिङ्गं प्रदर्शयत् इति न.सं.पु.पाठः।

सहस्रपत्रपद्मस्थं पद्मासनं स्मिताननम् । बन्धूकारुणसर्वाङ्गं बन्धुराधरमीश्वरम् ॥२६॥
तत्क्रोडस्थां महादेवीं सिञ्जन्मञ्जीरपादुकाम् । किङ्किणीद्योतकट्यन्तां[८] सर्वाभरणभूषिताम् ॥२७॥
दिव्याम्बरधरां देवीं काञ्चीगुणसमुज्ज्वलाम् । पीनयुग्मकुचां दिव्यां विस्तृतोरूसुशोभनाम्[९] ॥२८॥
मणिमुक्तामहाहारां कम्बुग्रीवां चतुर्भुजाम् । पाणिपद्मैर्दधानां वै पाशाङ्कुशवराभयान् ॥२९॥
दिव्याननां विशालाक्षीं त्रिलोचनैः सुशोभनाम् । बन्धूकारुणसङ्काशां बन्धुरोष्ठपुटां शुभाम् ॥३०॥
मकरकुण्डलोद्योतकर्णयुग्मसुशोभिताम्[१०] । अलके पत्रलेखाभिर्भ्राजमानां स्वतेजसा ॥३१॥
चूडामणिसुविभ्राजत्खण्डेन्दुशेखरां शिवाम् । शिवं दक्षभुजाभ्यां तं समालिङ्ग्य स्मिताननाम्[११] ॥३२॥
शिवं शक्त्या समायुक्तं सम्प्रेक्ष्याशु तदन्तरे । तेजोभिर्दीप्यमानं तौ मेनाते दिष्टमात्मना ॥३३॥
ततश्च नेमतुस्तौ हि शिवं शक्त्या युतं मुने । दण्डवत्पातयित्वाङ्गं प्रणेमतुर्हि भक्तितः ॥३४॥
भूयस्तुष्टुवतुर्देवं परिक्रम्य मुहुर्मुहुः । शिवं साक्षाच्छिवायुक्तमीषत्प्रहसिताननम् ॥३५॥
ॐ शिवाय शिपिविष्टाय शिवदाय नमो नमः । शिवायै शिवरूपायै शिवदायै नमो नमः ॥३६॥
नताःस्व ईश्वरं त्वां वै जगत्पितरमञ्जसा । मातर्देवि जगद्धात्रि नताःस्वस्त्वां भवानि च ॥३७॥
त्वमेव प्रणवः साक्षाल्लज्जारूपा त्वमेव च । मात्रारूपे नताःस्मस्त्वमर्द्धमात्रास्थितेऽम्बिके ॥३८॥

---

ती पुरुष हजार पात भएको कमलमा विराजमान भएका थिए। मन्द मुस्कान गर्दथे, मुख तथा सम्पूर्ण अङ्ग बन्धूक नाम गरेको फूलको जस्तो रातो वर्णका थिए। उनका ओठ पनि त्यस्तै राता थिए। उक्त पुरुषको काखमा आवाज गर्ने पाउजु लगाएकी, कटिमा घुँघुँराहरू भिरेकी र सम्पूर्ण गहनाले सुशोभित भएकी महादेवी पार्वतीलाई उनीहरूले देखे। दिव्य वस्त्र धारण गरेकी, सुनको सिक्री बाँधेकाले अत्यन्त उज्यालो देखिने, दुईवटा कडा स्तनहरूले युक्त र फैलिएका तिघ्राले गर्दा दिव्य स्वरूप भएकी महादेवीलाई उनीहरूले देखे। महादेवीले मणि र मोतीको हार लगाउनुभएको थियो। उहाँको शङ्खको जस्तो घाँटी थियो। चार हात थिए। हातरूपी कमलमा उहाँले पाश, अङ्कुश र अभय मुद्रा लिनुभएको थियो ॥२६–२९॥

उहाँको अत्यन्त सुन्दर मुख थियो। ठूला–ठूला आँखा थिए। तीनवटा आँखाले गर्दा उहाँ अति नै सुन्दर देखिनुहुन्थ्यो। बन्धूक नाम गरिएको फूलको जस्तो रातो वर्ण थियो। उहाँका दुईवटा ओठ अत्यन्त सुन्दर थिए। माछाको जस्तो आकार भएका कुण्डल उहाँका दुईवटा कानमा थिए। उहाँ कपालको घुम्रावटले युक्त भएका रेखा र आफ्नो तेजले सुशोभित हुनुहुन्थ्यो। चूडामणिले सुशोभित शिरमा प्रतिपदाको चन्द्रमाको कल्की लगाउनुभएको थियो। उहाँ मुसुक्क हाँसेको अनुहार लिएर दायाँपट्टिका दुई हातले शिवजीलाई अङ्कमाल गर्नुभएको थियो। उनीहरूले यस्ती देवीले युक्त भएका शिवजीलाई देखे। त्यसपछि तेजस्वी चम्किला ती दुबै योगीहरूले शिवशक्तिलाई देखेर आफ्नो ठूलो भाग्य भएको अनुभव गरे ॥३०–३३॥

हे अगस्त्य मुनि ! त्यसपछि तिनीहरूले शक्तिले युक्त भएका शिवजीलाई दण्डाकारमा अङ्ग झुकाएर भक्तिपूर्वक नमस्कार गरे। त्यसपछि उनीहरूले फेरि साक्षात् पार्वतीले युक्त भएका, हँसिला शिवजीलाई बारम्बार परिक्रमा गरेर स्तुति गरे। अकार, उकार, मकार र विन्दुमय ओङ्कारले युक्त भएका कल्याणदायी शिवजीलाई बारम्बार नमस्कार छ। कल्याणदायिनी शिवरूपा शिवालाई बारम्बार नमस्कार छ। संसारका स्वामी हे ईश्वर ! हजुरलाई हामी नमस्कार गर्दछौँ। हे आमा ! हे भवानी ! हे जगद्धात्री ! हजुरलाई नमस्कार छ। हजुर नै ॐकार हुनुहुन्छ र हजुर लज्जारूप हुनुहुन्छ। मात्रा र अर्धमात्रारूप पनि हजुर नै हुनुहुन्छ। हे अम्बिका ! हजुरलाई नमस्कार छ ॥३४–३८॥

---

८. किंकिणीद्योतकट्यां ताम् इति न.सं.पु.पाठः।
९. विस्तारोरुसुशोभनाम् इति न.सं.पु.पाठः।
१०. मकरकुण्डलोद्योतश्रवणयुगलां सदा इति न.सं.पु.पाठः।
११. तमालिङ्गितां स्मिताननाम् इति न.सं.पु.पाठः।

यजमानश्च भोक्ता त्वं भोज्यं यज्ञश्च शाश्वतः । स्वाहा स्वधा वषट् मन्त्रो वह्निरूपे नमोऽस्तु ते ॥३९॥
एवं स्तुतिं समाकर्ण्य शक्त्या युक्तस्तदामरौ । अदर्शयत्स्वकं लिङ्गं शक्त्या विरहितं परम् ॥४०॥
आकृष्याऽम्भसि तत्स्तम्भं लिङ्गञ्च तेजसां परम् । प्रमाणं धनुषश्चार्धं पञ्चवक्त्रं प्रधारयन् ॥४१॥
तयोः स्तुतिप्रसन्तुष्टं ज्वालामालिनमीश्वरम् । स्वबाहुभ्यां समालिङ्ग्य बबन्ध स्वाञ्जलिं शिवा ॥४२॥
पञ्चास्यमक्षमालाञ्च घटं पूर्णामृतं तथा । दधानं दिक्करैर्लिङ्गं सपीठिकमपश्यताम् ॥४३॥
नागावतंससुश्रोत्रं नागग्रैवेयकोज्ज्वलम् । अहिकङ्कणकेयूरसर्वाभरणभूषितम् ॥४४॥
चन्द्रार्काग्नीक्षणैर्युक्तं जटाचूडेन्दुशेखरम् । रञ्जितं पञ्चरङ्गास्यैः पञ्चात्मकं तथात्मभिः ॥४५॥
एवं प्रदर्शयन्देवावर्द्धात्मानं महेश्वरः । व्याचष्टे सगुणश्चाऽपि वरं दातुञ्च निर्गुणः ॥४६॥

ईश्वर उवाच

सर्वस्वरूपोऽहमगोचरोऽहं मद्भक्तिहीनैरसतां जनानाम् ।
तेषां मनस्तामसमाश्रितं[१२] मां पश्यन्ति चाऽन्धा न यथा प्रदीपम् ॥४७॥
निमित्तं हि सर्वस्वरूपोऽहमात्मा अशेषासुभृन्मानसाब्जे स्थितोऽहम् ।
निरस्तो जनानां मया चित्तरागः सदा भक्तिभाजां मदङ्घ्रिश्रितानाम्[१३] ॥४८॥
जनानां मनःस्थोऽनिशं प्रेरकोऽहं मनोबुद्धिचित्ताभिमानस्वरूपः ।
जनान्तेषु कार्येषु स्वयं प्रेरकोऽहमजोऽहञ्च सर्वस्य कर्ता[१४] सदात्मा ॥४९॥

---

यजमान तथा भोक्ता पनि हजुर नै हुनुहुन्छ । भोज्य पनि हजुर नै हुनुहुन्छ । शाश्वत यज्ञ पनि हजुर नै हुनुहुन्छ । स्वाहा, स्वधा, वषट् र मन्त्र पनि हजुर नै हुनुहुन्छ । हजुरलाई नमस्कार छ । हे अग्निको रूप लिने भगवती ! हजुरलाई पनि नमस्कार छ । यस्तो शक्तिले युक्त भएका शिवजीको स्तुति सुनेर भगवान्ले शक्ति नभएको उत्कृष्ट ज्योतिर्लिङ्ग देवतालाई देखाउनुभयो । त्यसपछि शिवजीले पानीबाट खिँचेर स्तम्भ आकारको, तेजिलो, आधा धनुषजस्तो, लामो, पाँच मुख भएको लिङ्ग स्वरूप धारण गर्नुभयो । ब्रह्मा र विष्णुले गरेको स्तुतिबाट प्रसन्न हुनुभएका, झल्झलाकार ज्वालाले युक्त शङ्करलाई हातले अङ्कमाल गरी पार्वतीले हात जोडेर स्तुति गर्नुभयो ॥३९–४२॥

उनीहरूले पाँच मुख भएका, अक्षमाला र अमृतले पूर्ण भएको घडा लिएका, आठ हातको चौकीमा बसेका शिवजीलाई देखे । उहाँ नागको फेय, नागको माला, नागको राम्रो कुण्डल, नागको बाला र नागको कल्कीले सुशोभित हुनुहुन्थ्यो । भगवान् महादेव पशुपतिका चन्द्रमा, सूर्य र अग्निका रूपमा तीन आँखा थिए । जटाको जुरामा चन्द्रमाको गहना लगाउनुभएको थियो । उहाँको शरीर पञ्चरङ्गले सुशोभित भएको थियो । यस्तो अर्धस्वरूपको दर्शन दिएर सगुण भईकन पनि निर्गुण रूप लिँदै उहाँले वरदान दिनका लागि बोल्नुभयो ॥४३–४६॥

ईश्वरले भन्नुभयो – म सर्वस्वरूप छु, अगोचर छु, मेरो भक्ति नगर्ने असज्जनहरूले अन्धाले बत्ती नदेखेझैँ आफ्नै मनभित्र बसेको मलाई देख्न सक्दैनन् । संसारको निमित्त म हुँ । म सबैको आत्मा हुँ । सम्पूर्ण प्राणीहरूको हृदयमा म सधैँ बसेको हुन्छु । सधैँ भक्ति गर्ने सज्जनहरूको चित्तमा रहेको विषयप्रतिको रागलाई हटाइदिन्छु । म मानिसको मनमा रहेर सधैँ प्रेरणा दिन्छु । म मन, बुद्धि, चित्त र अभिमानको रुपमा रहेको छु । विभिन्न कर्मका लागि मानिसभित्र छब्बीस तत्त्वका रूपमा म रहेको छु । म अज हुँ, म ती–ती व्यक्तिहरूको आत्मा हुँ ॥४७–४९॥

---

१२. मनस्तामस्याश्रितम् इति न.सं.पु.पाठः ।
१३. भक्तियुक्ताङ्घ्निनां सज्जनानाम् इति न.सं.पु.पाठः ।
१४. तत्तत्कृतोऽहम् इति न.सं.पु.पाठः ।

अविद्याश्रितोऽहं परं ज्योतिरीशो विपद्यत्र कार्ये श्रितस्तत्र[१५] चाऽहम् ।
विपद् वाऽस्तु सम्पद् न मे भेदः कश्चि[१६]दनिर्लिप्ततेजःस्वरूपोऽहमात्मा ॥५०॥
स्वकीयैश्च कार्यैः सुखं दुःखमाद्यं जना भुञ्जते यन्मया जन्यते तत्[१७]।
स्वकर्माभिनिन्द्यान्[१८] स्वकाले हरिष्ये प्ररक्षे निविष्टान् सुधर्मेषु यावत् ॥५१॥
पुरोद्भूतकर्माणि सन्त्यज्य मर्त्या मम प्रेमबद्धाः श्रिता विद्यया ये ।
यतन्ते[१९] हि कृच्छ्रेषु च भक्तिहीनाः कुकर्मप्ररूढा सदाऽसत्यभाजः ॥५२॥
यजन्तीश्वरं मां त्रयश्चैकवाक्यैः शिवेतीश्वरेति ह्यपि त्यागहीनाः ।
विहायानिवृत्तिं प्रपीडाजनिञ्च विशन्तीश्वरे मय्यजे मोक्षभद्रे ॥५३॥
पुराऽकृत्यकृत्युद्भवैनोव्यथाक्ता मदंशाश्रयं चान्तराद्रागवीचौ[२०]
पतन्तश्च[२१] जीवा यदि प्रेमभक्त्या भजन्ते सकृन्मां प्रयान्तीति नाकम्[२२] ॥५४॥
अभूवन्मनुष्याः शिवे भक्तिहीना[२३] मखैर्धर्मदानैर्विहीना कुजीवाः[२४] ।
विधिं माञ्च विष्णुं[२५] विहायाऽन्यसक्ताः अतोऽहारि सर्वं ममांशैः प्रदूतैः ॥५५॥
मदंशावतारा वियद्वह्निपृथ्वीमरुच्चन्द्रसूर्याः शिवाजाच्युतापः ।
धृताः सर्वलोका दशांशैः ममैतैरहञ्च प्रमाणं हरिष्ये च सर्वम् ॥५६॥
एतद्रूपं ममैवाऽऽद्यं जानीतां सततं युवाम् । सर्वदेहाश्रितं देवं तेजस्वि च सदाऽच्युतम् ॥५७॥

---

परम ज्योतिस्वरूप भएता पनि अविद्याले आश्रित सुख–दुःखात्मक प्राणीहरूको मनमा अज्ञानलिप्त भैरहेको छु तापनि मायामा निर्लिप्त नभएको तेजस्वरूप आत्मा पनि म नै हुँ। पहिले गरेका पाप र पुण्यको फल अनुसार म उनीहरूलाई सुख–दुःख आदि नाना किसिमका भोग दिलाउँछु। आफ्नो कर्मअनुसारको फल उनीहरूलाई भोग्न लगाई राम्रो धर्ममा संलग्न गराएर रक्षा गर्छु ॥५०–५१॥

जुन मनुष्यले पूर्वजन्ममा गरेको कर्म त्याग गरेर मेरो भक्ति गर्दै सद्विद्याको अध्ययन गर्छ, ती व्यक्तिहरू उत्तम हुन्छन्। मेरो भक्ति नगर्ने, कुकर्ममा लागेका, असत्यको पात्र बनेका व्यक्तिहरू नीच व्यक्ति हुन्। तीनथरी मनुष्यमध्ये कसैले पनि एकै वाक्यको प्रयोग गरेर मलाई हे शिव ! हे ईश्वर ! भन्दै जप्छन् भने तिनीहरू त्यागी हुन नसके पनि, रागी नै भए पनि विषयको कष्टकर पीडालाई जितेर कल्याणदायक, कसैले जित्न नसक्ने, अविनाशी र मोक्षदायक शिवमा प्रवेश गर्छन् ॥५१–५३॥

पूर्वजन्ममा गरेका कर्मले गर्दा दुःख पाएका, नरकमा पर्न तयार छुद्र जीवहरू भए पनि भित्र रहेको मेरो अंशको प्रेरणाले एकपटक मात्रै शुद्ध हृदयले मलाई सम्झिए भने तिनीहरूले स्वर्ग जान पाउँछन्। छोटो आयु भएका, यज्ञ, दान तथा धर्म नगर्ने मानिसहरू ब्रह्मा, कृष्ण र मलाई छोडेर अरू देवताको आराधनामा संलग्न हुन्छन्। त्यसैले तिनीहरूलाई मेरो अंश मानिएका यमराजका दूतहरूले हरण गर्छन्। आकाश, अग्नि, पृथ्वी, वायु, चन्द्रमा, सूर्य, शिव, ब्रह्मा, विष्णु, जल सबै मेरै अवतारहरू हुन्। यिनीहरूले मेरै दश अंश लिएर सम्पूर्ण स्थावर तथा जङ्गमलाई धारण गरेका छन्। यसमा मै प्रमाण छु। म सबैलाई हरण गर्न सक्छु। मेरो यही आद्यरूप हो भनेर तिमी दुईले सधैँ सम्झ। म सम्पूर्ण प्राणीको शरीरमा रहेको तेजोरूप अच्युत हुँ ॥५४–५७॥

---

१५. विपद्येषु कार्याश्रितस्तेषु इति न.सं.पु.पाठः ।
१६. विपद्याभिलब्धोऽपि नैव तथा ते इति न.सं.पु.पाठः ।
१७. जना भुञ्जयन्तो मया जन्यते ते इति न.सं.पु.पाठः ।
१८. स्वकर्माभिवन्द्याम् इति न.सं.पु.पाठः ।
१९. यतन्त्यम् इति न.सं.पु.पाठः ।
२०. मदंशाश्रिताभ्यन्तरा चाप्यवीचौ इति न.सं.पु.पाठः ।
२१. पतन्त्यश्च इति न.सं.पु.पाठः ।
२२. सकृत्सेवते मां च चानायि नाकम् इति न.सं.पु.पाठः ।
२३. दुर्दैनः प्रशक्ता इति न.सं.पु.पाठः ।
२४. अल्पजीवा इति न.सं.पु.पाठः ।
२५. विधे कृष्ण नस्ते इति न.सं.पु.पाठः ।

शृणु ब्रह्मन् वरं दास्ये विष्णो तुभ्यञ्च साम्प्रतम्। मयि भक्तिरतौ यस्माद् भवन्तौ मे स्तवे रतौ ॥५८॥
संसृज्यन्ताञ्च लोकेऽस्मिन् सर्वभूतानि सर्वशः। सर्गैश्चतुर्विधोद्भूतैः स्वकीयकर्मभोगिनः[२६] ॥५९॥
सृष्टिकर्त्ता यथा पूर्वं भव ब्रह्मन्ननुग्रहात्। अद्यादि त्वां[२७] वदिष्यन्ति पितामह इति जनाः[२८] ॥६०॥
विष्णो त्वमपि लोकेऽस्मिन् प्राणिनां पालको भव। यावन्तः सन्ति जीवास्ते[२९] पाल्यन्तां सकलाः त्वया॥६१॥
ततो लोका वदिष्यन्ति विष्णुर्लोकप्रपालकः। पालकः सर्वजीवानां भव विष्णो निरन्तरम्॥६२॥

ब्रह्मोवाच

कृतकृत्यौ भवावोऽद्य जानीवहे हृदेति वै। यतो नौश्चक्षुषां यातस्त्वं मनोवागगोचरः[३०] ॥६३॥
किमुच्चभाषणेनेश भवता सह नोऽधुना। तस्मादपि वरो लब्धः किं विधेयमतः परम्॥६४॥
तथापि भवतश्चाऽग्रे वक्तव्यं वचनं विभो। भूमन् किञ्चिदर्थयामि जगद्धेतुं चिरन्तनम्[३१] ॥६५॥
शतवर्षसहस्राणि दिव्यानि व्याप्य सन्ततम्। जलेनाऽऽच्छादिता भूमिर्ह्रदीभूता बभूव सा॥६६॥
देवैतानि च तोयानि शोषणीयानि साम्प्रतम्। मेदिन्यां यावदस्त्यम्भस्तावत् संहर सर्वशः॥६७॥
ततो भवत्प्रसादाद्वै सृजामि सर्वप्राणिनः[३२]। प्रकृत्यां चाऽपि[३३] मेदिन्यां चतुर्विधानि सर्वशः॥६८॥
अयं विष्णुर्यथोक्तञ्च भवताऽद्य यथा पुनः। पालयिष्यति मेदिन्यां तानि तानि भवाऽनिशम्॥६९॥

---

हे ब्रह्मा ! हे विष्णु ! तिमी दुबैले मेरो भक्ति गरेर मलाई स्तुति गर्‍यौ, त्यसैले म तिमी दुबैलाई वर दिन्छु। यस संसारमा सबैतिर चार किसिमका सृष्टिले युक्त भएका आ–आफ्नो कर्मअनुसारको फल भोग गर्ने प्राणीहरू सृजना गर। हे ब्रह्मा ! मेरो अनुग्रहबाट तिमी सृष्टिकर्ता बन। आजदेखि तिमीलाई मानिसहरूले पितामह भनेर भन्नेछन्। हे विष्णु ! यस संसारमा तिमी प्राणीहरूका पालक बन। जति प्राणीहरू छन्, ती सबैलाई तिमीले पालना गर्नू। त्यसपछि मानिसहरूले विष्णुलाई लोकको पालनकर्ता भन्नेछन्। हे विष्णु ! तिमी सबै प्राणीहरूका सधैं पालनकर्ता बन॥५८–६२॥

ब्रह्माले भन्नुभयो – आज हामी कृतकृत्य भएका छौं, हामीले हृदयदेखि नै हजुरलाई चिन्यौं। मनले पनि कल्पना गर्न नसकिने हजुर आज हाम्रो आँखाको अगाडि उपस्थित हुनुभएको छ। अहिले हजुरसँग ठूलो भाषण गरेर के हुन्छ र ! अर्थात् हजुरको महत्त्व गाएर साध्य छैन, त्यसमा पनि वर पाइयो, यसभन्दा बढी के पो चाहिएको छ र ! हे प्रभो ! हे ईश्वर ! तैपनि संसारको कल्याणका निमित्त हजुरसँग केही कुरा बिन्ती गर्नुपरेको छ। दिव्य सय हजार वर्ष भयो, पृथ्वी पानीले छोपिएर सरोवरका रूपमा परिणत भएकी छन्। हे भगवन् ! हे ईश्वर ! पृथ्वीमा जति पनि पानी छ, त्यो सबै हजुरले शोषण गर्नुपर्‍यो। पृथ्वी आफ्नो ठाउँमा आएपछि हजुरको अनुग्रहअनुसार सबैतिर म चारै किसिमका प्राणीहरूको सृष्टि गर्नेछु । हे ईश्वर ! यी विष्णुले पनि तपाईंले आज जे–जस्तो निर्देशन दिनुभएको छ, त्यसरी नै ती–ती प्राणीहरूलाई सधैं पालन गर्नेछन्॥६३–६९॥

---

२६. स्वकीयकर्मभुञ्जिन इति न.सं.पु.पाठः।
२७. ते इति न.सं.पु.पाठः।
२८. श्रुत इति न.सं.पु.पाठः।
२९. यावन्तो जीविनः सन्ति इति न.सं.पु.पाठः।
३०. त्वं मनस्यप्यगोचर इति न.सं.पु.पाठः।
३१. किञ्चित्त्वयीशान जगतां हेतवेऽधुना, इति न.सं.पु.पाठः।
३२. सर्वजीविन इति न.सं.पु.पाठः।
३३. सति इति न.सं.पु.पाठः।

स्कन्द उवाच

आकर्ण्य वचनं सद्यो ब्रह्मणोक्तं महेश्वरः । विनाशाय च तोयानां सृष्टिं कर्तुं मनो दधे ॥७०॥
ससर्ज शङ्करः पूर्वं लम्बोदरं गजाननम् । द्विनेत्रं द्विभुजं सौम्यं लड्डूकं परशुं सितम्[३४] ॥७१॥
दधानं सर्वभूषाढ्यं[३५] नागहारविभूषितम् । रुद्रार्द्धाङ्गसमुद्भूतं सर्वदेवनमस्कृतम् ॥७२॥
ततः ससर्ज मार्तण्डं तेजस्विनं महेश्वरः । जगन्ति[३६] च समुद्धर्त्तुं सर्वभूतनमस्कृतम् ॥७३॥
त्रिनेत्रं द्विभुजं देवं चाऽक्षमालाब्जहस्तकम् । जपाप्रसूनसङ्काशं सर्वाभाढ्यं शिवाङ्गजम् ॥७४॥
भूयः ससर्ज सोमं हि स्वदेहाच्छङ्करो मुने । आह्लादनाय नक्तञ्च जगतां गोचराय च ॥७५॥
त्रिनेत्रं द्विभुजं शान्तं चाऽक्षमालाभयावहम् । सर्वाभरणभूषाढ्यं शीताह्लादनमैश्वरम् ॥७६॥
एकैकांशं पुना रुद्रः स्वकीयं हि ससर्ज वै । असह्यं सर्वलोकानां दावानलं सुतैजसम्[३७] ॥७७॥
एकविंशतिनेत्रञ्च सप्ताननं भयावहम् । स्रुक्स्रुवायुधमैश्वर्यं सर्वभुजमबिन्धनम् ॥७८॥
संसृज्यैवं हरो देवान् चतुर आत्मनस्तदा[३८] । व्याजहार वचस्तेभ्यः सर्वेषाञ्च हिताय सः ॥७९॥

ईश्वर उवाच

दावानल महाबाहो चैतज्जलं प्रशोषय । पीत्वा सप्तार्णवं तावन्मध्यस्थो लवणाम्भसः ॥८०॥
यावान्नैव भवेत्क्षोणी विनष्टा[३९] प्रलये पुनः । पीत्त्वैतदुदकञ्चेह संरक्षतामियं क्षितिः ॥८१॥
लम्बोदरार्य शक्नोषि चैतज्जलं प्रशोषितुम् । पीत्वा शोषय पानीयं ततः स्पष्टा भवेत्क्षितिः ॥८२॥

---

कार्तिक स्वामीले भन्नुभयो – महादेवले ब्रह्माको वचन सुनेर पानीलाई तुरुन्त नाश गरी सृष्टि गर्ने विचार गर्नुभयो । सर्वप्रथम भगवान् शङ्करले लामो पेट, हात्तीको जस्तो सूँड, दुईवटा आँखा, दुई हातमा लड्डु र बन्चरो लिनुहुने, धेरै गहनाहरू लगाउनुहुने, सुन्दर नागको माला धारण गर्नुहुने, शिवको आधा अङ्गबाट पैदा हुनुभएका र सबै देवताहरूले नमस्कार गरिनुभएका गणेशका सृष्टि गर्नुभयो । त्यसपछि महादेवले संसारको उद्धारका लागि सम्पूर्ण प्राणीहरूका पूजनीय तेजस्वी सूर्यको सृष्टि गर्नुभयो । उहाँका तीन आँखा, दुई हात थिए । उहाँले हातमा रुद्राक्षको माला र कमल लिनुभएको थियो । जपाको फूलको जस्तो उहाँको तेज थियो, शिवजीको अङ्गबाट पैदा भएका सूर्य सबै प्राणीहरूका लागि भाग्य नै हुनुहुन्थ्यो ॥७०–७४॥

हे अगस्त्य मुनि ! त्यसपछि भगवान् शिवले रातमा संसार हेर्न सकियोस् तथा आनन्द दिन सकियोस् भनेर आफ्नो शरीरबाट चन्द्रमाको सृष्टि गर्नुभयो । उहाँका तीन आँखा र दुई हात थिए । उहाँको स्वरूप शान्त छ । उहाँले अभय दान दिने अक्षमाला लिनुभएको छ । सम्पूर्ण गहनाले सुशोभित हुनुहुन्छ । ईश्वरको यो रूप प्राणीहरूलाई शीतलता र आनन्द दिनका लागि भएको हो । फेरि आफ्नो एक अंश लिएर सम्पूर्ण प्राणीहरूले सहन गर्न नसक्ने धपधप बलेको दावानलको सृष्टि गर्नुभयो । उहाँका एक्काइस आँखा थिए, सातवटा मुख थिए, उहाँ डरलाग्दो हुनुहुन्थ्यो, उहाँका स्रुक् र सुरो हतियार थिए, पानी इन्धन भएका दावानल सबै प्राणीलाई खान सक्ने खालका थिए । यसरी चौथो पटक देवताहरूको सृष्टि गरेर सबैको कल्याणका लागि रुद्रले तिनीहरूलाई सम्झाउनुभयो ॥७५–७९॥

ईश्वरले भन्नुभयो – हे दावानल ! हे महाबाहु ! तिमी क्षारसमुद्रको बीचमा बसेर सातै समुद्रलाई पान गर र यो सम्पूर्ण जल सुकाऊ । जहाँसम्म पृथ्वी प्रलयकालमा विनाश हुँदैन, त्यहाँसम्मका लागि यो सम्पूर्ण पानी पिएर पृथ्वीको रक्षा गर । हे लम्बोदर दावानल ! तिमी यो पानी सुकाउन सक्छौ, त्यसैले यो पानी पिएर सुकाइदेऊ । त्यसपछि पृथ्वी स्पष्ट देखिनेछिन् ॥८०–८२॥

---

३४. परशूज्जवलम् इति न.सं.पु.पाठः ।
३५. सर्वाभरणभूषाढ्यम् इति न.सं.पु.पाठः ।
३६. जगताम् इति न.सं.पु.पाठः ।
३७. प्रदीपिनाम् इति न.सं.पु.पाठः ।
३८. चतुर्थानात्मनस्तदा इति न.सं.पु.पाठः ।
३९. विनाशम् इति न.सं.पु.पाठः ।

मार्त्तण्डाऽऽशु जगत्सर्वं विद्योतय भवानपि[४०]। व्योमगः सन् स्वतेजांसि जगत्यभिप्रसारय[४१] ॥८३॥
भो सोम भवता नक्तं लोके चाऽऽह्लाद्यतामिह। शीतांशुभिश्च पूतांशैः सर्वलोकान् सुशीतय[४२] ॥८४॥
ब्रह्मन् संसृज तान्[४३] रक्ष विष्णो पश्य स्वयं पुनः। क्षितौ स्पष्टत्वमाप्तायां पाताले[४४] मदनुग्रहात् ॥८५॥
युष्माभिश्च कृते स्पष्टे मही स्पष्टा भविष्यति। सर्वलोकनिदानं वै युवामेव भविष्यथ ॥८६॥
सहस्रवत्सरान्ते च लिङ्गमेतत्[४५] सुरार्चितम्। पुरी स्वर्णमयी दिव्या भविष्यतीह मुक्तिदा ॥८७॥
दिव्यायुतसहस्राणि यावत्सहस्रवत्सरम्। स्थास्याम्यनेन रूपेण भूतले देवपूजिते ॥८८॥
ततो म्लेच्छैरधिक्रान्तभूमेरन्तर्गते मयि। ततो म्लेच्छा भविष्यन्ति मानुषा धर्मवर्जिताः ॥८९॥
नरा मां गूढरूपं ते न ज्ञास्यन्ति विधे हरे। म्लेच्छगणे विलीनेऽत्राप्ययुताब्दं वनं[४६] महत् ॥९०॥
धारयिष्याम्यहञ्चाऽत्र पशुरूपो महावने। बहुवर्षान्तरे काले वने पुष्पोपशोभिते ॥९१॥
नानाद्रुमलताकीर्णे सर्वजन्तूपसेविते। सुखं स्थास्याम्यहं भूमौ पशून् सङ्क्रीडयन्मुदा[४७] ॥९२॥
ततः पशुपतिश्चेति वदिष्यन्ति च मां सदा। देवासुराः द्विजाः सिद्धास्ततो गूढं[४८] रसातले ॥९३॥
कामधेनुः समागत्य दर्शयिष्यति भूविले[४९]। म्लेच्छा विलयमेष्यन्ति[५०] मद्दर्शनाद्धि तत्क्षणे ॥९४॥
सहस्राब्दान्तरे दिव्ये कृते प्राप्ते महायुगे। मदात्मकञ्च पञ्चास्यमेतत्कूटे भविष्यति ॥९५॥

---

हे सूर्य ! तिमी आकाशमा रहेर संसारमा आफ्नो किरण फैलाउँदै सम्पूर्ण विश्वलाई चम्किलो तुल्याऊ। हे चन्द्र ! तिमी आफ्ना पवित्र शीतल किरणहरूद्वारा सम्पूर्ण लोकलाई शीतल बनाउँदै रातमा प्राणीहरूलाई आनन्दित तुल्याऊ। हे ब्रह्मा ! मेरो अनुग्रहद्वारा पातालबाट पृथ्वी बाहिर स्पष्ट भएपछि तिमी प्राणीको सृष्टि गर। त्यसमा विष्णुले पालन गर्नू। मेरो शक्तिले गर्दा पृथ्वी मासिनेछैन। तिमीहरूले मिलेर यस्तो गरेपछि पृथ्वी स्पष्ट हुनेछिन्, सबै प्राणीहरूका लागि तिमी दुई नै कारण बन्नेछौ ॥८३–८६॥

हजार वर्षपछि यस ज्योतिर्लिङ्गलाई देवताहरूले पूजा गर्नेछन्। यसै ठाउँमा सुवर्णमय मुक्तिदायिनी दिव्य नगरी बन्नेछ। दिव्य हजारौं करोडौं वर्षसम्म यही लिङ्गको रूप लिएर देवताद्वारा पूजित हुँदै म यस भूतलमा बस्नेछु। त्यसपछि म्लेच्छहरूद्वारा आक्रान्त पृथ्वीभित्र म लीन हुनेछु। यहाँका मानिसहरू पनि आफ्नो धर्म छाडेर सबै म्लेच्छ हुनेछन् ॥८७–८९॥

हे ब्रह्मा ! हे विष्णु ! पृथ्वीभित्र लुकेर बसेको मलाई त्यसबेला कुनै मानिसले पत्ता लगाउन सक्नेछैनन्। म्लेच्छहरू नाश भएपछि यस क्षेत्रलाई दश हजार वर्षसम्म ठूलो वनले ढाक्नेछ ॥९०॥ धेरै वर्षपछि पुष्पले सुशोभित यस वनमा म पशुको रूप लिएर आउनेछु। धेरै वर्षसम्म अनेक रुख, लहरा र वनजन्तुले युक्त भएको यस ठाउँमा म आनन्दसित पशुहरूका साथ खेलेर बस्नेछु ॥९१–९२॥

त्यसपछि देवता, दानव र सिद्धहरूले मेरो नाम पशुपतिनाथ भनेर राख्नेछन्। त्यसपछि फेरि त्यो लिङ्ग पृथ्वीमा धसिनेछ। कामधेनुले आएर फेरि पृथ्वीभित्र रहेको त्यस लिङ्गलाई देखाइदिनेछिन्। मलाई देख्नासाथ म्लेच्छहरू पनि विलय हुनेछन्। देवताहरूको हजारौं महायुग बितेपछि पार्थिव शरीरले युक्त भएको पाँच मुखले युक्त मेरो मूर्ति यसै शिखरमा उपलब्ध हुनेछ ॥९३–९५॥

---

४०. भवान्भव इति न.सं.पु.पाठः।
४१. स्वजेजोभिर्जगत्यस्मिन्प्रसारयन् इति न.सं.पु.पाठः।
४२. सुशीतयन् इति न.सं.पु.पाठः।
४३. संसृज्यतां जन्तून् इति न.सं.पु.पाठः।
४४. स्पष्ट्यां क्षितियातायां पातालम् इति न.सं.पु.पाठः।
४५. च एतल्लिङ्गम् इति न.सं.पु.पाठः।
४६. विलीनेऽत्र अयुताब्दम् इति न.सं.पु.पाठः।
४७. पशूनां क्रीडयन्मुदा इति न.सं.पु.पाठः।
४८. गूढ इति न.सं.पु.पाठः।
४९. कामधेन्वा ततो हेतो प्रदर्शिष्यन्ति भूबिले इति न.सं.पु.पाठः।
५०. मां म्लेच्छाश्च विलेष्यन्ति इति न.सं.पु.पाठः।

स्कन्द उवाच

इत्युक्त्वा सहसा तौ च निवृत्तोऽभून्[५१] महेश्वरः। धनुःप्रमाणमात्रञ्च लिङ्गं जले[५२] व्यवस्थितम् ॥९६॥
तदाज्ञाञ्च समादाय सर्वे देवा महाजले। अध्यासुराश्रितास्तत्र ज्योतिर्लिङ्गं घटोद्भव ॥९७॥
शृण्वन्ति येऽध्यायमिमं पवित्रं ते प्राप्नुवन्तीह सुभुक्तिमुक्ती।
एनोविमुक्ताश्च सुपुण्यभाजो लीना भविष्यन्ति हि तेजसीशे ॥९८॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे ईश्वरवाक्यं नाम षट्सप्ततितमोऽध्यायः ॥७६॥

---

कार्तिक स्वामीले भन्नुभयो – ती दुईजना ब्रह्मा र विष्णुलाई इति कुरा भनेर महादेव आफ्नो बाटो लाग्नुभयो र एक धनु बराबरको अर्थात् चार हात अग्लो लिङ्गरूप भएर पानीमा बस्नुभयो। हे अगस्त्य मुनि! शङ्करको आज्ञाअनुसार त्यस महातलमा देवताहरू पनि ज्योतिर्लिङ्गको आश्रय लिएर बसे ॥९६–९७॥

जसले यो पवित्र अध्याय सुन्छन्, तिनीहरूले यस संसारमा भुक्ति तथा मुक्ति दुबै पाउँछन्। सम्पूर्ण पापबाट मुक्त भएर शरीरलाई पवित्र तुल्याई तिनीहरू भगवान् शिवजीमा लीन हुन पुग्छन् ॥९८॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा ब्रह्मा र विष्णुलाई ईश्वरको उपदेशनामक छयत्तरौं अध्याय पूरा भयो।

---

५१. ताभ्यां निववृत्ते इति न.सं.पु.पाठः।　५२. जलमध्ये इति न.सं.पु.पाठः।

# सप्तसप्ततितमोऽध्यायः

## पशुपतेः स्थावरलिङ्गस्याविर्भावः

### स्कन्द उवाच

अबिन्धनोऽमरश्चाऽऽपः पपौ सर्वार्णवं क्षणात्। सहस्रवदनैर्भीमैर्निःशेषहेतुसम्भवम् ॥१॥
पीत्वा पीत्वाऽगमद्वह्निः पानीयमुत्तरे कुले। मेरोर्हि सप्तधा भूत्वा तस्थौ सप्तार्णवेषु सः ॥२॥
शुशुभिरे तदा तीव्रं द्वीपाः सप्तार्णवास्तथा। घृतदीपशिखातुल्य[1]–ज्वलच्छिखाभिरावृताः ॥३॥
बभूवुर्गिरयः सर्वे प्रव्यक्ताश्च समन्ततः। स्पष्टा च मेदिनी सर्वा सप्तद्वीपा ससागरा ॥४॥
हिमवद्दक्षिणे शृङ्गे[2] नेपालनामगह्वरे। राजते यत्र तल्लिङ्गं जलेनाऽऽच्छादिता क्षितिः ॥५॥
क्रीडां कुर्वन् महोल्लासैर्ह्रदीभूते भयङ्करे। लम्बोदरः पपौ तत्र निःशेषं जलमाशु हि[3] ॥६॥
यावन्ति सन्ति तोयानि तावन्त्यशेषमाशु सः। लम्बोदरः पपौ तत्र शुण्डेनोग्रेण सर्वशः ॥७॥
प्रययौ गगने सूर्यः सप्ताश्वरथसंस्थितः। अपालयज्जगत् सर्वं यामैः सप्तभिरेव च ॥८॥
चन्द्रोऽपि प्रययौ व्योम्नि हंसयानमहोज्ज्वलः। अपालयज्जगत्सर्वं क्षयवृद्धिसमन्वितः[4] ॥९॥
ससर्ज सर्वभूतानि मेदिन्याञ्च पितामहः। त्रिविधानि यथापूर्वं सप्तद्वीपेषु सर्वशः ॥१०॥
दिव्यायुतसहस्राणि वत्सरं द्विसहस्रकम्। स्वर्णपुर्य्यां सुरैर्नित्यं ज्योतिर्लिङ्गं प्रसेव्यते ॥११॥
ततः प्राप्ते कलौ शेषे तिरोधानं बभूव तत्। तेजोलिङ्गं पुनर्भूमौ हिमवत्सानुसुन्दरे ॥१२॥
नानाद्रुमलताकीर्णे नानापुष्पोपशोभिते। अगोचरे नरैस्तत्र स रेमे पशुरूपधृक् ॥१३॥
ततो व्यक्तो ह्यभूदीशस्तेजोलिङ्गं महाद्भुतम्। प्रमाणं धनुषो मात्रं सर्वदेवैः प्रसेवितम् ॥१४॥

---

## अध्याय – ७७

### भगवान् पशुपतिको स्थावरलिङ्गको आविर्भाव

कार्तिक स्वामीले भन्नुभयो – त्यसपछि वडवानल अर्थात् समुद्रको अग्निले डरलाग्दा हजार मुखद्वारा निःशेष हुने गरी सम्पूर्ण पृथ्वीको पानीलाई पान गरे। उत्तरतिर बसेर अग्निले त्यो पानी खूबसित पिएपछि समुद्रको पानीले छुट्टिएको सुमेरु पर्वत सात खण्डमा बाँडियो। घिउमा बालेको उज्यालो बत्तीले युक्त भएका भाँडाजस्तै बलिरहेका ज्वालाले गर्दा सातै द्वीप र सात समुद्र अत्यन्त सुशोभित भए। त्यसपछि चारैतिर पहाडहरू देखिए। सात द्वीप र समुद्रले युक्त भएकी पृथ्वी छर्लङ्ग देखिने भइन् ॥१–४॥

हिमालयको दक्षिणतर्फ नेपाल नाम गरेको तलाउमा अवस्थित शिवजीको त्यो ज्योतिर्लिङ्ग भएको भूभागलाई पानीले ढाकेको थियो। डरलाग्दो त्यस तलाउमा अत्यन्त आनन्दका साथ खेल्न लागेका, लामो पेट भएका वा लम्बोदर नाम गरेका श्रीगणेश प्रलयकालमा भगवान् विष्णुजस्तै विराजमान भए। जति पनि त्यहाँ पानी थियो, त्यो सबैलाई शेष नराखीकन लम्बोदर गणेशले आफ्नो सूँडको अग्रभागले पान गरे ॥५–७॥

त्यसपछि सातवटा घोडाले युक्त भएको रथमा चढेर सूर्यले सातै प्रहर संसारलाई रक्षा गर्दै हिँड्न थाले। चन्द्रमा पनि हाँसमा चढेजस्तै गरेर आकाशमा घुमीघुमी सधैँ उदाएर संसारलाई पालना गर्दै हिँड्न थाले। ब्रह्माले पनि पृथ्वीका सातै द्वीपमा सबैतिर पहिलेजस्तै तीनैथरी प्राणीहरू सृजना गरे। दिव्य बाह्र हजार वर्षसम्म त्यस सुवर्णपुरीमा देवताहरूले ज्योतिर्लिङ्गको सेवा गरे। अनि कलियुग आएपछि हिमालयको सुन्दर टाकुरामा रहेको त्यो शिवलिङ्ग भूमिमा फेरि विलीन भयो ॥८–१२॥

त्यसपछि विभिन्न किसिमका वृक्ष, लहराले ढाकिएको, नानाथरी फूलले सुशोभित, मनिसले देख्न नसक्ने त्यस क्षेत्रमा भगवान् शिवले पशुको रूप लिएर क्रीडा गर्नुभयो। सारा देवताले पूजा गर्न लायक एक धनु अर्थात् चार हात लामो उदेकलाग्दो तेजिलो लिङ्ग त्यहाँ देखियो ॥१३–१४॥

---

१. सघृतदीपपात्राणि इति न.सं.पु.पाठः।
२. सानौ इति न.सं.पु.पाठः।
३. लम्बोदरो बभौ तत्र निःशेषे च यथा हरि इति न.सं.पु.पाठः।
४. नित्यमेवोदयन्नतै इति न.सं.पु.पाठः।

तत्राऽमरैरधिष्ठानं कृतं सम्यक्च सन्ततम् । राजधानी कृता दिव्या सर्वदेवैरधिष्ठिता ॥१५॥
पशुपतेः पुरी दिव्या जाम्बूनदमयी परा । ततः सर्वेषु देवेषु पुरी माहेश्वरी श्रुता ॥१६॥
राजते राजतैः स्वर्णै[५]र्मणियुक्तैस्तदोजसा । ज्योतिर्मयी पुरी दिव्या पाशुपतीति विश्रुता ॥१७॥
तस्यां विराजते लिङ्गं घृतपूर्णशिखेव हि । स्वर्णपद्मान्तरे मध्ये कर्णिकास्थो मणिर्यथा ॥१८॥
सा ततस्तत्प्रमाणान्ते द्वापरान्तेऽमरार्चिता । मृण्मयी काष्ठलिप्ता सा[६] बभूव नगरी पुनः ॥१९॥
तिरोहितानि रत्नानि सौवर्णानि तथाविधम् । तिरोहिते शिवे भूमौ कलौ प्राप्ते हि सर्वशः ॥२०॥
पुरीं पाशुपतीं त्यक्त्वा स्वं स्वं लोकं ययुः सुराः । ततो बभूव सा शून्या सर्वदेवैर्विवर्जिता ॥२१॥
ब्रह्मापि प्रययौ सद्यो यत्र गोकर्णशङ्करः । तत्र तेपे मुदा नित्यं समहर्यन्महेश्वरम् ॥२२॥
गरुडगो ययौ विष्णुर्दोलाशिखरिशेखरम् । तस्थौ तत्र मुदाऽजस्रं शङ्करवचनान्मुने ॥२३॥
लम्बोदरस्तदात्माऽसौ नैर्ऋत्ये दिशि सन्ततम् । तत्क्षेत्रं पालयन् तस्थौ सर्वसिद्धिप्रदो भृशम् ॥२४॥
कामधेनुः सदा दोग्ध्री चन्द्रवत्सानुगह्वरे । अवात्सीदनिशं देवीं पशुपतिं प्रसेव्य सा ॥२५॥
तिरोधानं गतं रत्नं दानधर्मैर्विवर्जितम्[७] । तिरोधानं गतं लिङ्गं तेजोरूपं[८] हि तत्र च ॥२६॥
मृत्तिकया च तद्भूमिराच्छादिता च सर्वशः । कामधेनुः समागत्य दुग्धं स्रवति नित्यशः ॥२७॥
अद्यप्रभृति तत्राऽस्ति शिवमुद्दिश्य तत्क्षितौ[९] । संस्थाप्य पशुपं देवमाप्लाव्य वाग्वतीजले ॥२८॥
प्रत्यायात्याश्रमं दिव्यं चन्द्रवद्गिरिसानुनि ।

---

त्यहाँ देवताहरू निरन्तर बस्न थाले । उनीहरूले सम्पूर्ण देवताहरूका निमित्त बस्न लायक सुन्दर राजधानी तुल्याए । यो पशुपति शहर सुनैसुनको बन्यो । सबै देवताहरूका बीचमा यो माहेश्वरी पुरीका नामले प्रसिद्ध भयो । सुवर्णमणि र माणिक्यले झकिझकाउ भएको ज्योतिस्वरूप यो शहर पाशुपती पुरीका नामले प्रख्यात भयो । घिउको बत्तीको ज्वाला र सुनको अष्टदलको माझमा झल्किएको मणिजस्तै यो पुरी सुशोभित भयो । त्यसबेला देवताहरूले सुसेवित पाशुपती पुरी द्वापरको अन्त्यमा माटो, ईँट र काठका घर एवं भवनहरूले भरियो ॥१५–१९॥

कलियुग लागेपछि शिवजी अन्तर्धान हुनुभयो । पृथ्वीमा सारा रत्न तथा सुवर्णनिर्मित वस्तुहरू विलीन भए । सबै देवताहरू पाशुपती पुरीलाई छोडेर आ–आफ्नो धाममा गए । सम्पूर्ण देवताहरूद्वारा वर्जित त्यो पुरी त्यसपछि शून्य भयो । ब्रह्माजी पनि जहाँ गोकर्णेश्वर महादेव हुनुहुन्थ्यो त्यसै ठाउँमा गएर शिवजीको पूजा गर्दै तपस्या गर्न लाग्नुभयो ॥२०–२२॥

हे अगस्त्य मुनि ! विष्णु पनि भगवान् शङ्करको निर्देशनअनुसार गरुडमाथि चढेर दोलागिरिको शिखरमा गई त्यहाँ आनन्दसित बस्नुभयो । सम्पूर्ण सिद्धिका दाता शिवपुत्र गणेश पनि नैर्ऋत्य दिशामा गएर द्वारपाल बनी त्यस क्षेत्रको पालना गर्दै बस्न लाग्नुभयो । सधैँ दूध दिने कामधेनु गाई चन्द्रागिरि पर्वतको गुफामा प्रत्येक दिन भगवान् शङ्कर र गुह्येश्वरीको सेवा गर्दै बस्न थालिन् । दान, धर्म घटेको हुँदा सारा रत्नधातु विलीन भए र दिव्य लिङ्ग तेज पनि विलीन भयो । त्यहाँको भूमिलाई माटोले सबैतिरबाट ढाक्यो । कामधेनु आएर सधैँ त्यहाँ दूध चुहाउन थालिन् । आजसम्म पाशुपती परीमा शिवका लागि राखिएको त्यो स्थिति छँदै छ । त्यसपछि पशुपतिको लिङ्ग पनि वाग्वतीको पानीले ढाक्यो । कामधेनु पनि प्रतिदिन पशुपतिमा दूध चढाएर चन्द्रागिरिमा अवस्थित दिव्य आश्रममा आउँथिन् ॥२३–२८½॥

---

५. राजते स्वर्णहेमैश्च इति न.सं.पु.पाठः ।
६. मृद्रूपलेष्टिकाकाष्ठै इति न.सं.पु.पाठः ।
७. तिरोधानं गते रत्ने दानधर्मैविवर्जिता इति न.सं.पु.पाठः ।
८. गते लिङ्गे तेजोरूपे इति न.सं.पु.पाठः ।
९. तत्क्षितिम् इति न.सं.पु.पाठः ।

दशवर्षसहस्रान्ते कश्चिन् म्लेच्छो ददर्श सः[१०] ॥२९॥
लिङ्गे दुग्धप्रस्रविनी[११] गां तत्रागत्य नित्यशः। एकदा दिवसे म्लेच्छाश्चखनुस्तन्मृत्तिकां किल ॥३०॥
बीजं किमिति कृत्वाऽत्र द्रष्टुं तद्वचनेन वै। बिले प्रमाणे धनुषो ज्वालामालिनमीश्वरम् ॥३१॥
असह्यतेजसः पुञ्जं खनका ददृशुस्तदा। ज्वालामयं महालिङ्गं तप्तकाञ्चनसन्निभम् ॥३२॥
विलील्युः खनकास्तत्र ज्वालाग्नौ शलभा इव। म्लेच्छाश्च बहवस्तत्र विलीनाश्चाभवन्पुनः ॥३३॥
किं किं किं किमिति[१२] कृत्वा चकिताः प्रेक्षकाश्च ये। पापात्मानोऽपि ते म्लेच्छाः योगभक्तिविवर्जिताः ॥३४॥
सुमुक्तिं लेभिरे चैशे[१३] भूयो विहाय सम्भवम्। बुबोध च तदा ब्रह्मा तद्वृत्तान्तं घटोद्भव ॥३५॥
म्लेच्छा लीना बभूवुस्ते लिङ्गे तेजोमये ध्रुवम्। मत्वा सृष्टिविमुक्तिञ्च विष्णुमाहूय सत्त्वरम् ॥३६॥
ययौ तेन समं धाता यत्र ज्योतिर्मयः स्थितः। सुनिर्माय[१४] नमन् ब्रह्मा लिङ्गं शिलामयं शिवम् ॥३७॥
सवेदिकञ्च पञ्चास्यं सर्वलक्षणलक्षितम्। स्थापितवान्मुदा भक्त्या ज्योतिर्लिङ्गोपरि ध्रुवम् ॥३८॥
ज्योतिःपिधानकं लिङ्गं सिद्धमणिमयं परम्। संस्थापितं[१५] यथा भूयो विष्णुना प्रभविष्णुना ॥३९॥
इन्द्रनीलमयं ग्रावलिङ्गं तदुपरि ध्रुवम्। स्थापितं विष्णुना लिङ्गं प्रत्यक्षमिह दृश्यते ॥४०॥

---

दश हजार वर्षपछि त्यहाँ एउटा म्लेच्छ आयो। त्यसले दिनदिनै गाई आउँदै दूध चुहाउँदै गरेको देख्यो। गाईले दुध चुहाएको देख्ने म्लेच्छको वचनअनुसार यसको कारण के रहेछ भन्ने जान्नका लागि एकदिन अनेक म्लेच्छहरूले आएर त्यहाँको माटो खनेर हेरे। खोजी गर्दा प्वालमा एकधनु अर्थात् चार हात अग्लो ज्योतिर्मय शिवलिङ्ग फेला पारी दर्शन गरे ॥२९–३१॥

म्लेच्छहरूले कसी लगाएको सुनजस्तै चम्किलो हेर्न नसकिने, अत्यन्त तेजिलो ज्वाला भएको महालिङ्गको दर्शन गरे। त्यसपछि खपिनसक्नु ज्वाला र चुम्बक भएको ज्योतिर्लिङ्गलाई तिनीहरूले देखे। त्यहाँ खन्न भनेर अघि सर्ने धेरै मान्छेहरू खतम भए। धेरै म्लेच्छहरू पनि त्यहीँ विलीन भए अर्थात् मरे। यो के रहेछ भनेर छक्क पर्दै त्यस ज्योतिर्लिङ्गलाई हेर्न आएका, योगभक्ति नभएका, पापी म्लेच्छहरूले पनि शरीर छोडेर मुक्ति प्राप्त गरे, पुनर्जन्म नहुने गरी ईश्वरमा विलीन भए। हे अगस्त्य मुनि ! यो सबै वृत्तान्त ब्रह्माले थाहा पाउनुभयो ॥३२–३५॥

तेजोमय लिङ्गमा म्लेच्छहरू लीन भएपछि आफूहरूले गरेको सृष्टिको नियम र मुक्तिको व्यवस्था हटेको देखेर ब्रह्माले विष्णुलाई बोलाउनुभयो। विष्णु र ब्रह्माले तेजोमय लिङ्ग भएको ठाउँमा गएर वेदीसहितको ढुङ्गाको शिवलिङ्ग बनाई स्थापना गरी प्रणाम गर्नुभयो। लिङ्ग पाँच मुख भएको र सारा लक्षणले युक्त थियो। त्यसपछि उहाँहरूले भक्तिपूर्वक ज्योतिर्लिङ्गमाथि त्यो पाँचमुखे शिवलिङ्ग स्थापना गर्नुभयो। त्यसरी नै ज्योतिर्लिङ्गलाई ढाक्ने सिद्धमणिले बनाएको लिङ्ग विष्णुले त्यहाँ स्थापना गर्नुभयो। इन्द्रनीलमणिको जस्तो कान्तिदायक ढुङ्गाले बनेको महालिङ्ग विष्णुले त्यहाँ स्थापना गर्नुभयो। यो लिङ्ग यहाँ प्रत्यक्ष छ ॥३६–४०॥

---

१०. दर्शवर्षसहस्राणि कश्चिम्लेच्छो ददर्श स इति न.सं.पु.पाठः।
११. तत्र प्रस्रविता गावसमागत्य च नित्यशः, इति न.सं.पु.पाठः।
१२. किमिति हि, इति न.सं.पु.पाठः।
१३. सुमुक्तिमलभंश्चैशे इति न.सं.पु.पाठः।
१४. सुनिर्मित्य इति न.सं.पु.पाठः।
१५. संस्थापित इति न.सं.पु.पाठः।

सर्वाधस्तेजसां पुञ्जः सर्वभूतैरगोचरः[१६] । सर्वदा दृश्यते लोकैर्विष्णुना स्थापितः शिवः[१७] ॥४१॥
शिलामयं महालिङ्गं पञ्चव्यूहं तदात्मकम् । पशुपतिमहालिङ्गं ब्रह्मविष्णुशिवात्मकम् ॥४२॥
उमामहेश्वरं लिङ्गं सर्वदेवालयं बभौ । ततो विप्रास्तमर्हन्ति भक्त्या पञ्चोपचारकैः ॥४३॥
पशुपतिं तमीशानं तन्मन्त्रैश्च महोत्सवैः । तत्राऽक्रान्तेऽपि च म्लेच्छैर्दानधर्मविवर्जितैः ॥४४॥
तन्मनुजा द्विजा नित्यं समर्चन्ति पशोः पतिम्[१८] । ये ये मुक्तिञ्च वाञ्छन्ति त्यक्त्वेह संसृतिं पराम् ॥४५॥
पशुपतिं प्रपश्यन्तु भक्त्या योगेन तत्र वै । तत्राद्यं विद्यते शैवं पशुकलेवरं परम् ॥४६॥
सकृत्पश्यन्ति लोकास्तत् तेषां पुण्यफलं महत् । तस्य दर्शनमात्रेण पशुः पापैर्विमुच्यते ॥४७॥
स्पर्शनात्पाणिना भक्त्या पशुजन्म न विद्यते । ये पश्यन्ति शिवं साक्षात्पञ्चव्यूहसमाननम् ॥४८॥
श्रद्धयाऽश्रद्धया वाऽपि तेषां पुण्यफलं शृणु । सर्वजन्मार्जितैः पापैश्चतुर्विधोद्भवैश्च ते ॥४९॥
मुच्यन्ते तत्क्षणान्नूनं ज्ञानाज्ञानकृतैरपि । सर्वयज्ञफलं लब्ध्वा सर्वदानोद्भवं तथा ॥५०॥
सर्वोपवासपूजानां फलं लब्ध्वा महीयते[१९] । शिवगङ्गाजलाप्लावी संस्पृश्यापः सुविग्रहम् ॥५१॥
पश्यन्पशुपतिं भक्त्या निष्पापः शाङ्करं व्रजेत् । भक्त्या प्रदक्षिणां कृत्वा पशुपतेर्यथाविधि ॥५२॥
सर्वयज्ञोपवासेषु सर्वधर्मेषु यत्फलम् । अश्वमेधसहस्राणां तत्क्षणं लभ्यते फलम् ॥५३॥
नमस्कारः स्मृतो यज्ञः सर्वयज्ञोद्भवं फलम् । नमस्कृत्य[२०] महालिङ्गमश्वमेधफलं लभेत् ॥५४॥
प्रणम्य दण्डवद्भूमौ नमस्कारेण योऽर्चयेत् । स यां गतिमवाप्नोति न तां यज्ञशतैरपि ॥५५॥

---

सम्पूर्ण प्राणीहरूले नदेख्ने ज्योतिर्लिङ्ग सबैभन्दा तल रहेको छ । विष्णुले स्थापना गरेको शिवलिङ्ग सधैं मानिसहरूले हेर्न पाउँछन् । ब्रह्मा, विष्णु र शिवमय (सद्योजात, वामदेव, तत्पुरुष, अघोर र ईशाननामक) पाँच मुख भएको पशुपतिको लिङ्ग शिलामय छ, यो महालिङ्ग हो । सबै देवताहरूको मन्दिर भएको उमामहेश्वरको लिङ्ग अत्यन्त सुशोभित छ । त्यसलाई ब्राह्मणहरूले भक्तिपूर्वक पञ्चोपचारले पूजा गर्छन् । दान, धर्म नगर्ने म्लेच्छहरूले पनि हे पशुपति ! हे ईशान ! भनेर शिवजीको मन्त्र जप्दै उत्सव गरे भने तिनीहरूको मुक्ति हुन्छ । जुन ब्राह्मण आदि मनुष्यले सधैं पशुपतिको पूजा गर्छन्, तिनीहरूले यस लोकमा आनन्द भोग गरेर संसार छाडेपछि मुक्ति पाउँछन् । पशुको रूप लिने पशुपतिनाथको जसले एकपटक मात्र भए पनि भक्तिपूर्वक दर्शन गर्छ त्यसले पाशबाट मुक्ति पाउँछ ॥४१-४७॥

जसले पाँचै रूप र मुख भएका साक्षात् शिवजीको दर्शन गर्छ अथवा हातले स्पर्श गर्छ भने त्यसले पशुको जन्म पाउनुपर्दैन । श्रद्धा अथवा अश्रद्धा जसरी भए पनि शङ्करको दर्शन गऱ्यो भने जन्म-जन्मान्तरमा मनले, वचनले र संसर्गले जानी-नजानीकन गरेका पाप नाश भई दर्शकलाई पुण्य प्राप्त हुन्छ । सबैथरी दानको पुण्य उपलब्ध हुन्छ, त्यस्ता मानिसले तुरुन्त मोक्ष पाउँछन्, सम्पूर्ण उपवास र पूजा गरेको फल पाउँछ ॥४८-५०॥

शिवगङ्गामा स्नान गरेर भगवान् शङ्करको शरीर र शिवगङ्गाको स्पर्श गऱ्यो भने त्यसले सम्पूर्ण उपवास र पूजा गरेको फल पाउँछ । भक्तिपूर्वक पशुपतिलाई प्रदक्षिणा गरेर यदि उहाँको दर्शन गऱ्यो भने त्यो व्यक्ति पापरहित भएर शिवलोक जान्छ । सम्पूर्ण यज्ञ, उपवास, धर्म, हजारौं अश्वमेध यज्ञ गर्दा मानिसले जुन फल पाउँछ, त्यो फल पशुपतिनाथको दर्शन गर्नाले तुरुन्त पाउँछ । यज्ञ भनेको नमस्कार हो, नमस्कार गर्नाले सम्पूर्ण यज्ञ गर्दा प्राप्त हुने फल प्राप्त हुन्छ । ज्योतिर्लिङ्ग पशुपतिनाथलाई दर्शन गऱ्यो भने अश्वमेध यज्ञ गरेको फल प्राप्त हुन्छ । भुइँमा दण्डजस्तै लम्पसार परेर जसले नमस्कारद्वारा शिवजीको आराधना गर्छ, त्यसले जुन गति पाउँछ, सयवटा यज्ञ गर्दा पनि त्यस्तो गति प्राप्त हुन सक्दैन ॥५१-५५॥

---

१६. पुञ्जं सर्वभूतैरगोचरम् इति न.सं.पु.पाठः ।
१७. स्थापितं शिवम् इति न.सं.पु.पाठः ।
१८. तन्मनुजः द्विजाः नित्यं पशुपतिं समर्चिता इति न.सं.पु.पाठः ।
१९. सर्वोपवासपूजां स शिवलोके महीयते इति न.सं.पु.पाठः ।
२०. नमस्कृत्वा इति न.सं.पु.पाठः ।

सर्वयज्ञोपवासेषु सर्वतीर्थेषु यत्फलम् । स्तुतिजपोपहारेण सर्वं तत्फलमाप्नुयात् ॥५६॥
वाञ्छन्ति ये सुनिर्वाणं ज्ञानतो भवनाशकम् । सेव्यतां पशुपो भक्त्या सर्वदुष्कृतनाशकः[२१] ॥५७॥
भये विपदि रोगार्तौ[२२] चोत्सवे ग्रहपीडने । यः स्मरेत् पशुपं देवं स तं रक्षति सर्वतः[२३] ॥५८॥
ये चाऽध्यायमिदं भक्त्या संशृण्वन्ति नरोत्तमाः । भूत्वा च तन्मनस्का वै तेषां पुण्यफलं शृणु ॥५९॥
यत्र कुत्राऽपि देशे वा मृता भूता[२४] द्विजाश्च ते । पूर्वजन्मार्जितैर्धर्मैर्जायन्ते तत्पुरोत्तमे ॥६०॥
तन्मनुज्ञाः श्रुतिज्ञाश्च सर्वशास्त्रविशारदाः । चतुर्वर्गफलं भुक्त्वा लभेरन्[२५] शाङ्करं मृते ॥६१॥

एतन्मया ते कथितं पुराणं[२६] श्रुतं मया तद् भवतो मुनेर्यत्[२७] ।
शिलामयोऽभूत्पशुपस्तदादिरजाच्युतस्थापित आर्य यस्मात् ॥६२॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे पशुपतिस्थावरलिङ्गोत्पत्तिर्नाम सप्तसप्तिततमोऽध्यायः ॥७७॥

---

सम्पूर्ण यज्ञ, उपवास, सम्पूर्ण धर्म, स्तुति, जप र भेटी चढाउँदा जुन फल प्राप्त हुन्छ, त्यो फल शिवजीलाई दण्डवत् नमस्कार गर्नाले मात्र पनि प्राप्त हुन्छ । जसलाई ज्ञानद्वारा संसारको बन्धनलाई नाश गरी मुक्ति प्राप्त गर्नुछ, त्यसले सबै कुकृत्यलाई नाश गर्ने भगवान् पशुपतिनाथको भक्तिपूर्वक सेवा गर्नुपर्छ । जसले डर, विपत्ति, रोग, उत्सव, ग्रहको पीडा आदि भएको बेलामा भगवान् पशुपतिनाथको स्मरण गर्छ, त्यसलाई उहाँले सबैतिरबाट रक्षा गर्नुहुन्छ ॥५६–५८॥

जसले शिवजीमा मन लगाएर यो अध्याय भक्तिपूर्वक सुन्छन्, त्यसको पुण्यफल सुन्नुहोस् । जुनसुकै देशमा जन्मिएको अथवा मरेको भए तापनि पूर्वजन्ममा कमाएको पुण्यले गर्दा शिवजीको मन्त्र जान्ने, वेद जान्ने, सर्वशास्त्रज्ञाता ब्राह्मण भएर यसै पुरीमा जन्मन्छन् । त्यसपछि धर्म, अर्थ, काम र मोक्षको भोग गरी शिवलोक जान्छन् ॥५९–६१॥

हे मुनि ! मैले मुनिबाट सुनेर यो पुरानो कुरा तपाईंलाई बताएँ, जब ब्रह्मा र विष्णुले शिवलिङ्ग स्थापना गर्नुभयो, त्यसै समयदेखि पशुपतिको लिङ्ग शिलामय भयो ॥६२॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा पशुपतिको स्थावरलिङ्गको उत्पत्तिनामक सतहत्तरौं अध्याय पूरा भयो ।

---

२१. सर्वदुष्कृतनाशकम् इति न.सं.पु.पाठः ।
२२. रोगार्ते इति न.सं.पु.पाठः ।
२३. स्मरणात्पशुपं यो वै रक्षति सर्वतः स तम् इति न.सं.पु.पाठः ।
२४. भूत्वा इति न.सं.पु.पाठः ।
२५. लभेयु इति न.सं.पु.पाठः ।
२६. ध्रुवं वै इति न.सं.पु.पाठः ।
२७. दुष्टं पुराहं भवता मुनेर्यत् इति न.सं.पु.पाठः ।

# अष्टसप्ततितमोऽध्यायः

## नन्दिकेश्वराय वरप्रदानम्

### अगस्त्य उवाच

मकरन्दं पुनः पातुं कथामधुरसं त्विमम्। अहन्तु भ्रमरीभूतस्त्वन्मुखाम्भोजनिःसृतम् ॥१॥
भगवन् श्रोतुमिच्छामि भवतः[1] पार्वतीसुत। यदुक्तं भवता पूर्वं सर्वं शर्वकथोत्तमम् ॥२॥
कथं भगवता पूर्वं मृगरूपं धृतं विभो। यस्य शृङ्गात्समुद्भूतः कथं गोकर्णशङ्करः ॥३॥
पशुरूपं दधानः स कैः कथञ्च प्रलक्षितः। एतत्सर्वं महासेन कृपया वद[2] साम्प्रतम् ॥४॥

### स्कन्द उवाच

शृणु वत्स महाभाग यथा तत्त्वं ब्रवीमि ते। यत्पृष्टोऽहं त्वया चाऽद्य गोप्या दिव्या कथा मुने ॥५॥
अस्ति भूधरराजस्य हिमवत्युत्तरे शुचौ। मुञ्जवान्नामके कूटे[3] नन्दनोपवनद्युतिः ॥६॥
वज्रस्फटिकपाषाणप्रवालाङ्कुरसङ्कुरः। नीलामलशिलावर्णगृहसंयुक्तकन्दरः ॥७॥
विचित्रकुसुमोपेतैर्लतामञ्जरिधारिभिः। विरेजे पादपैः शृङ्गैरुल्लिखद्भिरिवाम्बरम् ॥८॥
ग्रावदर्पणचन्द्रे तु धातुद्रव्यं स्रवन् भृशम्। प्रतिबिम्बाश्च[4] पुष्पाणां चित्रिता इव सर्वतः ॥९॥
विकसत्पादपोपेता हरिद्दलैः समन्विता। उन्मीलिता इवाऽऽभान्ति नानाविपिनराजयः ॥१०॥
भिन्नेन्द्रनीलनैर्मल्यकान्तिभिः प्रस्रवणाम्बुभिः[5]। चित्रैः कुसुमसञ्छन्नैः शिलासुन्दरविस्तरैः ॥११॥

---

## अध्याय – ७८

### नन्दिकेश्वरलाई वरप्रदान्

अगस्त्य मुनिले भन्नुभयो – हजुरको मुखारविन्दबाट निस्किएको कथारूपी मधुरसका मकरन्द पान गर्नका लागि म भ्रमरो भएको छु। हे भगवन् ! हे कार्तिक स्वामी ! सम्पूर्ण कथामध्ये यो चाँहि उत्तम कथा हो भनेर हजुरले बताउनुभएको थियो। हे प्रभु ! कसरी भगवान् शिवले पहिले मृगको रूप लिनुभयो ? उहाँको सिङबाट कसरी गोकर्ण महादेव पैदा हुनुभयो ? त्यो सबै म हजुरबाट सुन्न चाहन्छु। पशुको रूप लिने भगवान् शङ्करलाई क–कसले देखे ? हे कार्तिक स्वामी ! अब यो सबै मलाई बताइदिनुहोस् ॥१–४॥

कार्तिक स्वामीले भन्नुभयो – हे बाबु ! हे भाग्यशाली अगस्त्य ! तपाईंले जुन सबैभन्दा पुरानो गोप्य र दिव्य कथा मलाई सोध्नुभयो, त्यो सबै यथार्थ रूपमा बताउँछु, सुन्नुहोस्। पवित्र पर्वतराज हिमालयको उत्तरतिर नन्दन बगैँचाको जस्तो कान्ति भएको मुञ्जवान् नाम भएको एउटा पर्वतशिखर छ। यो पर्वत वज्र, स्फटिक, मुगा र मणिकै ढुङ्गा तथा प्रवालको ज्योति मिसिएको, नीलो, निर्मल शिलाको वर्णले युक्त भएका गुफाहरूले समन्वित छ ॥५–७॥

विभिन्न किसिमका फूलले युक्त भएका लहरा र मुजुराहरूलाई धारण गर्ने वृक्षले भरिएको यो पर्वत गगनचुम्बी शिखरहरूद्वारा अत्यन्त सुशोभित छ। ढुङ्गारूपी ऐनामा निरन्तर चुहिरहेको धातु एवं द्रव्य चुहाउने मुञ्जवान् पर्वत सुहाएको छ। निर्मल धातुमय यस पर्वतमा फुलेका फूलहरूका प्रतिबिम्बहरू देखिन्छन्। फुलेका वृक्ष र हरिया पातहरूले युक्त विभिन्न किसिमका वनपङ्क्तिहरू बिउँझिएका हुन् कि जस्ता देखिन्छन्। निर्मल इन्द्रनीलमणिको जस्तो कान्ति भएका नदीको जल, पोखरी, विचित्र फूलहरूले भरिपूर्ण बगैँचा र ओछ्याइएका सुन्दर पत्थरले गर्दा यो पर्वत सुशोभित देखिन्छ ॥८–११॥

---

१. त्वयि तत् इति न.सं.पु.पाठः। २. वद मह्यं हि इति न.सं.पु.पाठः। ३. वमुञ्जवान्नाम कूटयो, इति न.सं.पु.पाठः।
४. प्रतिविम्बैश्च इति न.सं.पु.पाठः। ५. प्रस्रवनाम्बुभि इति न.सं.पु.पाठः।

शक्रचापनिभै रम्यैः कुबेरभवनोपमैः। नानापतत्रिणां रावैर्भृङ्गरावैरितस्ततः ॥१२॥
पुष्परसलिहोद्भूतैर्वृक्षावासकृतोद्भवैः। मुञ्जवान् शुशुभे शैलो[६] मुनिभिश्च तदालयैः ॥१३॥
विद्याधरगणैः सिद्धैर्गन्धर्वगायनैर्भृशम्। किन्नरोद्गीतरम्यैस्तैरप्सरोगणनर्त्तनैः[७] ॥१४॥
मृदङ्गतालभेरीणां मर्मरोद्भवरावकैः। ऋषीणां वेदनिर्घोषैर्यज्ञाहुतिसुगन्धिभिः ॥१५॥
धारापातैश्च तोयानां शुशुभे गिरिशेखरः। मणीनां तेजसा रम्यैः प्रतिबिम्बैर्मिथोऽशुभिः ॥१६॥
स्रवद्भिश्चन्द्रकान्तानां सूर्यकान्तोद्भवाग्निभिः। सवर्त्तुकुसुमोत्पन्नैः सर्वद्रुमसुशोभनैः ॥१७॥
वनै रम्यो मयूराणां केकाभिश्चाऽद्रिशेखरः[८]। तस्मिन्नगवरे रम्ये चाऽध्यास्ते शङ्करः सदा ॥१८॥
धर्मारण्ये तपःक्षेत्रे देव्या सह जगद्गुरुः। दग्ध्वा कामं पुरा शम्भुस्तत्रैव च दृगग्निना[९] ॥१९॥
तपःस्थिते हि मद्धेतोर्देवैः प्रपेरितो मुने। तदादिस्तत्र चालक्ष्यः सर्वेषां भगवान् हरः ॥२०॥
स्वर्गादागत्य देवैः स विमानगैः प्रसेवितः। आसीन्म्लेच्छः पुरा कश्चित् सुबाहुर्नाम विश्रुतः ॥२१॥
मृगयासु रतो धन्वी श्लेष्मान्तकवनेऽवसत्। सोऽन्ते पञ्चत्वमापन्नो वाग्वत्याः सुन्दरे तटे[१०] ॥२२॥
कार्त्तिकीपूर्णिमायाञ्च रुजार्दितो हि निर्जनः। कात्यायनकुले जातो वाग्वतीजलपानतः ॥२३॥
वेदविदांवरो विप्रस्तपःशीलो गुणान्वितः। सोऽत्र कृतयुगे मध्ये नन्दी नाम द्विजोत्तमः ॥२४॥

---

इन्द्रको धनुषजस्ता राम्रा धनीका सुन्दर घरहरू, फूलको रस चाट्न लागेका तथा रुखमा बसोवास गर्ने विभिन्न किसिमका पक्षी एवं भ्रमराको आवाज र ऋषिहरूका कुटीहरूले गर्दा यो पर्वतको टाकुरो अत्यन्त सुशोभित भएको छ। विद्याधरहरूको गण, सिद्ध, गन्धर्वका गाना, किन्नरहरूकोगीत, अप्सराहरूका नृत्य, मादल, ताल, दमाहा, मुजुरा आदि बाजाको ध्वनि, ऋषिका वैदिक स्वरहरूको उद्घोष, यज्ञको आहुतिले सुगन्धित भएका पानीका जलधारा र मणिका तेजहरूको मनोहर प्रतिबिम्बिको परस्पर सम्मिश्रणले गर्दा यो पर्वतको शिखर अत्यन्त शोभायमान भएको छ ॥१२–१६॥

पग्लिएको चन्द्रकान्तमणि, बलिरहेको सूर्यकान्तमणि, सम्पूर्ण ऋतुमा पैदा हुने फूल र सुशोभित सबैथरी वृक्षहरूले गर्दा यो पर्वतशिखर सुन्दर बनेको छ। चखेवा, मयूर आदि जीवहरू र केरा आदि गरिएका फलफूलले रमणीय भएको यस पर्वतको शिखरमा भगवान् शङ्कर सधैं बस्नुहुन्छ। अघि तपस्याको क्षेत्र भएको यस धर्मारण्यमा पार्वतीका साथ विराजमान जगद्गुरु शिवजीले आँखाको ज्वालाद्वारा कामदेवलाई डढाउनुभएको थियो। हे मुनि ! देवताहरूले तपस्या गर्दा अघि त्यसै ठाउँमा भगवान् शिव सबैलाई दर्शन दिएर अन्तर्धान हुनुभएको थियो। त्यसै समयपछि उहाँ देखिन छोड्नुभयो। स्वर्गबाट विमानमा चढेर देवताहरू त्यहाँ आई भगवान्को सेवा गर्छन् ॥१७–२०½॥

अघि एउटा सुबाहु नाम गरेको कुनै म्लेच्छ थियो। शिकार गर्नका लागि त्यो श्लेष्मान्तक वनमा बस्थ्यो। एकदिन कार्तिक पूर्णिमाको दिन रोग लागेर वाग्वतीको तीरमा गई त्यसले जल पियो र मऱ्यो। यसरी वाग्वतीको जल पिएको हुनाले त्यो म्लेच्छ शील तथा गुणले युक्त कात्यायनकुलमा पैदा भयो। नन्दी नाम गरेको त्यो ब्राह्मण वेदका ज्ञाताहरूमा उत्तम, तपस्वी एवं गुणी भएकाले त्सत्ययुग आधा व्यतीत भएपछि उत्तम ब्राह्मणका रूपमा प्रसिद्ध भयो ॥२१–२४॥

---

६. शुशुभे गिरिकूटेऽसौ इति न.सं.पु.पाठः।
७. च तथाप्सरोविनर्तनै इति न.सं.पु.पाठः।
८. जीवञ्जीवमयूराणां कदल्याद्यभिरामकै इति न.सं.पु.पाठः।
९. दृशाग्निना इति न.सं.पु.पाठः।
१०. वाग्मतीसुतटे भुवि इति न.सं.पु.पाठः।

आरिराधयिषुः[११] शर्वं तपस्तेपे महत्तदा । ग्रीष्मे पञ्चातपेऽतिष्ठच्छिशिरे सलिलाश्रये ॥२५॥
ऊर्ध्वबाहुर्निरालम्बस्तोयानिलहुताशनः । एकाब्दं विविधैरुग्रैस्तपोभिर्नियमैः सह[१२] ॥२६॥
जपोपहारपुष्पैश्च काले काले सदा हृदा[१३] । शङ्करं विधिवद् भक्त्या समानर्च द्विजोत्तमः ॥२७॥
उग्रेण तपसात्मानं तापयामास सुव्रतः । काष्ठोपलोपमो विप्रः शीतातपसहः कृशः ॥२८॥
क्षीणोऽभूत् कृष्णदेहोऽसौ ततः प्रीतश्च शङ्करः । सम्यगाराधितो भक्त्या नियमेन प्रतोषितः ॥२९॥
तदात्मदर्शनं प्रादात्तस्मै च वृषभध्वजः । व्याजहार वचस्तस्मै चाऽऽशुतोषः सुभक्तितः ॥३०॥
दिव्यनेत्रं प्रदातुञ्च[१४] वरञ्चैव तदीप्सितम् ।

ईश्वर उवाच

भक्ताऽऽर्य दिव्यनेत्रं ते सर्वलोकैः सुदुर्लभम् ॥३१॥
दर्शनाय च मां नन्दिन् तव भक्त्या ददाम्यहम् । वरं वृणीष्व मत्तोऽद्य ददामि ते त्वदीप्सितम् ॥३२॥
यथाऽष्टगुणमैश्वर्यं त्रैलोक्येशत्वमीप्सितम् । अव्ययमपवर्गं वा गाणपत्यमथापि वा ॥३३॥
निष्कण्टकानि राज्यानि हृदीप्सितं वृणीष्व मे ।

स्कन्द उवाच

लब्ध्वा दिव्येक्षणं नन्दी ददर्शाशु महेश्वरम् ॥३४॥
सहस्रसूर्यसङ्काशं बालार्कमण्डलप्रभम् । जटाधरं शिवं साक्षाच्चन्द्रार्द्धकृतशेखरम् ॥३५॥
त्रिनेत्रञ्च चतुर्बाहुं नागाभरणभूषितम् । अक्षमालां त्रिशूलञ्च दधानं डमरुं तथा[१५] ॥३६॥

---

त्यस अवसरमा भगवान् शङ्करको आराधना गर्ने इच्छाले उसले ठूलो तपस्या गऱ्यो । ग्रीष्म ऋतुमा त्यसले पञ्चाग्नि ताप्यो, शिशिर ऋतुमा पानीभित्र बसेर तपस्या गऱ्यो । तपस्या गर्दा उसले हात ठाडो पारेको थियो, विनाआधार उभिएको थियो । पानी, हावा र धुँवा खान्थ्यो । एक वर्षसम्म त्यसले विभिन्न किसिमका नियमहरूका साथ तपस्या गऱ्यो । जप, भेटी तथा फूलले समय-समयमा त्यस ब्राह्मणले विधिपूर्वक भक्तिनम्र भएर शिवजीको पूजा गऱ्यो ॥२५-२७॥

त्यस ब्राह्मणले राम्रो व्रत गर्दै कठिन तपस्याद्वारा आफूलाई जीर्ण तुल्यायो । चीसो तथा तातो सहन सक्ने दुब्लो त्यो ब्राह्मण काठ र ढुङ्गाजस्तै बन्यो । ऊ अत्यन्त दुब्लायो, शरीर कालो भयो, त्यसपछि नियमपूर्वक गरिएको आराधना र भक्तिबाट भगवान् शङ्कर सन्तुष्ट हुनुभयो । त्यसपछि भगवान् शङ्करले त्यस ब्राह्मणलाई आफ्नो स्वरूपको दर्शन दिनुभयो र भक्तिले गर्दा प्रसन्न हुनुभएका शिवजीले उसले चाहेको दिव्य नेत्ररूपी वर प्रदान गर्नका लागि भन्नुभयो ॥२८-३०½॥

ईश्वरले भन्नुभयो – हे नन्दी ! मलाई भक्तिपूर्वक हेर्नका लागि आवश्यक दिव्यनेत्र म तिमीलाई दिन्छु, यो सबै प्राणीहरूका लागि दुर्लभ छ । हे नन्दी ! तिमीलाई आठै गुणले युक्त भएको ऐश्वर्य अथवा तीनै लोकको स्वामित्व जे इच्छा लागेको छ, त्यो वर मसित माग, म दिन्छु । कहिल्यै क्षय नहुने मोक्ष अथवा गणपतिको पद अथवा निष्कण्टक राज्य, तिमीलाई हृदयमा जे इच्छा लागेको छ, त्यो वर माग ॥३१-३३½॥

कार्तिक स्वामीले भन्नुभयो – दिव्यदृष्टि पाएपछि नन्दीले हजार सूर्यजस्ता तेजिला देखिने बालसूर्यको कान्तिजस्तो मण्डलाकार घेराले युक्त हुनुभएका महेश्वरलाई देखे ॥३४॥ शिवजीले जटा धारण गर्नुभएको थियो, अर्धचन्द्र शिरमा थियो, तीन आँखा र चार हात थिए, नागको गहना लगाउनुभएको थियो । उहाँले रुद्राक्षमाला लगाउनुभएको थियो, त्रिशूल, डमरु र अक्षमाला धारण गर्नुभएको थियो ॥३४-३६॥

---

११. तमाराधयिपु इति न.सं.पु.पाठः ।
१२. कृत इति न.सं.पु.पाठः ।
१३. हि तेन वै इति न.सं.पु.पाठः ।
१४. दिव्यनेत्रप्रदानाय इति न.सं.पु.पाठः ।
१५. डमरुमभयं तथा इति न.सं.पु.पाठः ।

वृषपृष्ठे समासीनं व्यालयज्ञोपवीतिनम् । कोटिसूर्यप्रभां देवीन्तद्वामक्रोडसंस्थिताम् ॥३७॥
संश्लिष्टां हरहस्तेन चेषत्प्रहसिताननाम् । तावभिप्रेक्ष्य[१६] नन्दी स चोदतिष्ठच्च सत्वरम् ॥३८॥
प्रणम्य दण्डवद्भक्त्या तुष्टाव च पक्रिमन् ।

नन्द्युवाच

ॐ नमोऽजाय च रुद्राय त्रिनेत्राय शिवाय च ॥३९॥
शङ्कराय महेशाय जगद्वक्त्राय चक्षुषे । भवाय च भवेशाय भवगोत्राय[१७] शम्भवे ॥४०॥
भवौषधाय भव्याय भव्यदाय नमो नमः । भीमाय भीमरूपाय भीमेश्वराय वै नमः ॥४१॥
भीमप्रदाय शर्वाय भीमनाशाय ते नमः । सौम्याय सौम्यरूपाय सोमांशायांशुदाय च ॥४२॥
सोमशीर्षाय देवाय सौम्यदाय नमो नमः । नमो देव्यै महादेव्यै जगद्धात्र्यम्बिके नमः ॥४३॥
शिवायै शिवरूपिण्यै शिवदायै नमोऽस्तु ते । नमोऽस्तु भगवत्यै च भवान्यै भयहारिणि ॥४४॥
याचे भूमन् वरं त्वां हि चैतदेव महेश्वर । तव पादार्चने नित्यं रतो भवत्वयं जनः ॥४५॥
त्वत्स्मरणे सुनिष्ठश्च तेऽभिधाने रतो मुखे । त्वद्दासोऽयं जनो हि त्वां क्षणमपि न मुञ्चतु ॥४६॥
एतद्वरञ्च मे देहि नापरं वरमुत्सहे ।

ईश्वर उवाच

एवमेवं हि भूयास्त्वं यथा वदसि तत्तथा ॥४७॥
भक्त्या चाऽऽराधितोऽहन्ते यतो नन्दिन् तपोबलात् । दुष्करं सर्वदेवैश्च कठोरञ्च महातपः ॥४८॥
दुष्कृतं सुमहाश्चर्यं त्वया कृतं यतस्तपः । सङ्क्षोभितञ्च ते नन्दिन् त्रैलोक्यं सचराचरम् ॥४९॥

---

सर्पको जनै लगाएर गोरुमाथि बस्नुभएको थियो । उहाँको बायाँ काखमा करोडौं सूर्यको जस्तो कान्ति भएकी भगवती हुनुहुन्थ्यो, मुसुक्क हाँसेकी भगवतीलाई शिवजीले आलिङ्गन गर्नुभएको थियो । उहाँलाई देख्नासाथ नन्दी तुरुन्त उठे, भक्तिपूर्वक दण्डवत् प्रणाम गरे र परिक्रमा गरी शिवजीलाई खुसी तुल्याए ॥३७–३८॥

नन्दीले भने – ॐकारको रूप लिने तीन आँखा भएका अजन्मा रुद्रलाई नमस्कार छ । संसारका मुख भएका, संसारका दृष्टिस्वरूप महेश्वरलाई नमस्कार छ ।भव, भवेश्वर, भवगोत्र, भवौषधि, भव्य र कल्याणदायक शम्भुलाई नमस्कार छ । डरलाग्दा भीम रूप लिने भीमेश्वरलाई नमस्कार छ । डर पैदा गरिदिने र भयलाई नाश गरिदिने शिवजीलाई नमस्कार छ । सौम्यरूप लिने, सोमका अंश भएका, छिट्टै प्रसन्न हुने, चन्द्रमालाई शिरमा लिने सौम्यस्वरूप भएका शान्तिदायक शिवलाई बारम्बार नमस्कार छ ॥३९–४२॥

हे जगद्धात्री ! हे अम्बिके ! महादेवीलाई नमस्कार छ । शिवको रूप लिने कल्याणकारिणी शिवा हजुरलाई नमस्कार छ । हे भयहारिणी भगवती ! भवानी हजुरलाई नमस्कार छ । हे महेश्वर ! म हजुरसँग के वर माग्छु भने यो व्यक्ति सधैँ हजुरको पाउको पूजामा संलग्न बनोस्, हजुरको स्मरण र हजुरको नामकीर्तनमा लागोस् । यो हजुरको दासले हजुरलाई एकछिन पछि नछाडोस्, मलाई यही वर दिनुहोस्, अरू माग्न चाहन्नँ ॥४६½॥

ईश्वरले भन्नुभयो – हे नन्दी ! तिमीले जे भन्यौ, तिमी त्यस्तै बन्न सक्छौ किनभने तिमीले तपस्या गरेर भक्तिपूर्वक मेरो सेवा गर्‍यौ । कुनै पनि देवताले गर्न नसक्ने कठोर तपस्या तिमीले गर्‍यौ । तिमीले अत्यन्त आश्चर्यदायक कठिन तपस्या गर्‍यौ । हे नन्दी ! तिमीले यो दिव्य तपस्या गरेर चर–अचर प्राणीले युक्त भएको तीनै लोकलाई हल्लायौ ॥४७–४९॥

---

१६. तमभिप्रेक्ष्य इति न.सं.पु.पाठः । १७. भवगोत्रे च इति न.सं.पु.पाठः ।

तपसानेन दिव्येन तस्माच्छ्रेष्ठो गणाधिपः । मत्तुल्यो मानितो लोके त्वमेकश्च सुरार्चितः ॥५०॥
मद्रूपो ह्यपरो वत्स त्र्यक्षः सर्वगुणोत्तमः । भविष्यसि न सन्देहो देवदानवपूजितः ॥५१॥
अनेनैव शरीरेण जरामरणवर्जितः । दुष्प्राप्यो विबुधैश्चापि देहोऽयं भवतु ध्रुवम् ॥५२॥
पार्षदानां बलिष्ठस्त्वं मामकानां द्विजोत्तमः । नन्दीश्वर इति ख्यातो भविष्यसि न संशयः ॥५३॥
प्राप्तमष्टगुणं मत्त ऐश्वर्यन्ते तपोबलम् । द्वितीयां मे तनुं त्वान्तु नमस्यन्ति च देवताः ॥५४॥
अग्रे प्रत्येषि देवानां देवकार्ये तु सर्वदा । त्वं प्रभुर्भविता लोके मत्प्रसादान्मुनीश्वरः ॥५५॥
त्वामेवाऽभ्यर्चयिष्यन्ति सर्वभूतानि सर्वतः । मत्तः समभिवाञ्छस्त्वं[१८] प्रसादं पार्षदाधिपम् ॥५६॥
वरार्थिने वरं तुभ्यं दास्याम्यहं प्रसादतः । यस्त्वां द्वेष्टि स मां द्वेष्टि यस्त्वां मन्ता स मामपि ॥५७॥
नाऽऽवयोरन्तरं नन्दिन्[१९] लोकानामस्ति किञ्चन । द्वारे मे दक्षिणे नित्यं सन्तिष्ठसि गणाधिपः ॥५८॥
वामे भृङ्गी तथा भूयो महाकालश्च सर्वदा । प्रतीहारो भवानद्य सर्वदा त्रिदशोत्तमः ॥५९॥
भवान् रक्षतु मे द्वारं महाकालेन वै समम् । न वज्रेण न चक्रेण न दण्डेन न चाग्निना ॥६०॥
कश्चित्कर्तुं तवाबाधां न शक्तो भुवनत्रये । देवदानवगन्धर्वा यक्षराक्षसपन्नगाः ॥६१॥
त्वामेव संश्रयिष्यन्ति मद्भक्ताः पुरुषाश्च ये । त्वयि तुष्टे ह्यहं तुष्टः कुपिते कुपितस्त्वहम् ॥६२॥
त्वत्तः प्रियतरो नास्ति ममाऽन्यो द्विजपुङ्गव । त्वां द्रष्टुं त्रिदशाश्चाऽत्राऽऽगमिष्यन्ति न संशयः[२०] ॥६३॥
तदर्थं हेतुतस्तिष्ठ कञ्चित् कालं गणोत्तम[२१] ।

---

यो दिव्य तपस्याले गर्दा तिमी श्रेष्ठ गणपति बनेका छौ । हे नन्दी ! तिमीलाई संसारमा मलाई जस्तै मान्नेछन्, तिमीलाई देवताले पूजा गर्नेछन्, तिम्रो मेरोजस्तै अर्को रूप हुनेछ, तिम्रा तीन आँखा हुनेछन् र सम्पूर्ण उत्तम गुणहरू तिमीमा रहनेछन् । तिमीलाई देवता तथा दानवले पूजा गर्नेछन्, तिम्रो यो शरीर वृद्धावस्था र मृत्युबाट मुक्त हुनेछ ॥५०–५१॥

हे द्विजश्रेष्ठ ! तिम्रो यो शरीर देवताहरूले पनि पाउन सक्दैनन्, यो कुरा निश्चय छ मेरा पार्षदहरूमा सबैभन्दा बलिया तिमी हुनेछौ । तिमी नन्दीश्वर नामले प्रसिद्ध हुनेछौ, यसमा शङ्का छैन । तपस्याको बलले गर्दा तिमीले मबाट आठै गुणले युक्त भएको ऐश्वर्य पायौ । तिम्रो शरीर मेरो दोस्रो शरीर हो, तिमीलाई सबै देवताहरूले नमस्कार गर्नेछन् । देवकार्यमा देवताहरूले सधैं तिमीलाई अगाडि लाउनेछन् ॥५२–५४॥

हे नन्दी ! मेरो अनुग्रहले गर्दा तिमी संसारका मालिक हुनेछौ, सम्पूर्ण प्राणीहरूले चारैतिरबाट तिम्रो पूजा गर्नेछन् । तिमीले मबाट पार्षदको अधिपति हुनपाउने इच्छा राखेका छौ । त्यस्तो वरको कामना गर्ने तिमीलाई त्यस्तै किसिमको प्रसादस्वरूप वर दिन्छु । जसले तिमीलाई ईर्ष्या गर्छ, त्यसले मलाई पनि ईर्ष्या गरेको ठहर्छ । जसले तिमीलाई मान्छ, त्यसले मलाई पनि मानेको हुन्छ । संसारमा हामी दुईको बीच कत्ति पनि भेद छैन । तिमी गणको अधिपति भएर मेरो दक्षिण ढोकामा सधैं बस्न पाउनेछौ । बायाँपट्टि भृङ्गी र महाकाल रहनेछन् । सबै देवतामा उत्तम देवता तिमी आजदेखि पहरेदार बन । महाकाललाई साथमा लिएर तिमी मेरो ढोकाको रक्षा गर । वज्र, चक्र, दण्ड अथवा अग्नि कसैले पनि तीनै लोकमा तिमीलाई बाधा पुऱ्याउन सक्नेछैन ॥५५–६०॥

देवता, दानव, गन्धर्व, यक्ष, राक्षस, सर्प र मेरा जति पनि भक्तहरू छन्, ती सबैले तिम्रो सेवा गर्नेछन् । तिमी खुसी भयौ भने म पनि खुसी हुन्छु, तिमी रिसायौ भने म पनि रिसाउँछु । हे द्विजश्रेष्ठ ! तिमीभन्दा प्यारो अर्को मेरो कुनै व्यक्ति छैन । तिमीलाई दर्शन गर्न देवताहरू आउनेछन्, यसमा शङ्का छैन । मलाई खुसी पार्ने साधन तिमी नै हुनेछौ ॥६१–६३½॥

---

१८. समभिवाञ्छन् तम् इति न.सं.पु.पाठः । १९. भेद इति न.सं.पु.पाठः ।
२०. त्वां द्रष्टुं त्रि सराश्चात्र चायास्यन्ति न संशय इति न.सं.पु.पाठः । २१. वरोत्तम इति न.सं.पु.पाठः ।

स्कन्द उवाच

एवं तस्मै वरं दत्त्वा प्रीतः स्वयमुमापतिः ॥६४॥
कात्यायनमृषिं भूयो रहस्यं समुवाच ह। श्लेष्मान्तके महारण्ये पुण्यक्षेत्रे[२२] मनोहरे ॥६५॥
नानाद्रुमलताकीर्णे नानापुष्पोपशोभिते। विचरिष्यामि तत्रैव मृगरूपेण वै सुखम् ॥६६॥
इयं वार्ता न वक्तव्या[२३] कस्मैचिन्मुनिपुङ्गव। इत्युक्त्वा प्रययावीशः श्लेष्मान्तकवनोत्तमम् ॥६७॥
तिरस्कृत्येक्षणं तत्र कात्यायनस्य शङ्करः। तस्मै वरः पुरा दत्तः रमणीय[२४] वनोत्तमम् ॥६८॥
श्लेष्मान्तक इति नाम्ना त्रिषु लोकेषु विश्रुतम्। अन्तर्हिते ततस्तस्मिन्भवे वै भूतनायके ॥६९॥
ध्रुवं बभूव दिव्याङ्गो नन्दी गणचमूपतिः। चतुर्भुजस्त्रिनयनो दिव्यदेहेन संस्थितः ॥७०॥
दिव्यवर्णवपुश्चारुर्दिव्यालङ्कारभूषितः। त्रिशूली परिघी दण्डी पिनाकी मौञ्जमेखली ॥७१॥
शुशुभे तेजसा तत्र द्वितीय इव शङ्करः।
नन्दी सहर्षं शुशुभे तदाऽसौ[२५] लब्ध्वाऽऽशु रुद्रात्सुवरं महत्त्वम्।
नन्दी ततो वै त्वभवद्धि शम्भोः श्रेष्ठो गणानां प्रतिहारसंस्थः ॥७२॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नन्दिकेश्वरवरप्रदानं नामाष्टसप्ततितमोऽध्यायः ॥७८॥

---

कार्तिक स्वामीले भन्नुभयो – यसरी नन्दीलाई वर दिएर स्वयं महादेव प्रसन्न हुनुभयो र कात्यायन नाम गरेका ऋषिलाई यसको रहस्य बताउनुभयो। हे ऋषि ! श्लेष्मान्तक नाम गरेको पुण्यभूमिमा रहेको विभिन्न रुख, लहराले ढाकिएको र विभिन्न फूलहरूले सुशोभित जङ्गलमा मृगरूप लिएर म घुम्ने गर्दछु। यो वृत्तान्त कसैलाई पनि नबताउनू ॥६४–६६॥

यति कुरा बताएर भगवान् शङ्कर श्लेष्मान्तक वनमा जानुभयो। कात्यायन ऋषिका अगाडि नै आँखाबाट अलप हुनुभयो। श्लेष्मान्तक नामले तीनै लोकमा ख्यातिप्राप्त यो सुन्दर वन छ। यसलाई अघि शिवजीले वरदान दिनुभएको थियो। त्यसरी भगवान् पशुपतिनाथ अन्तर्धान भएपछि गणका सेनापति नन्दी दिव्य शरीरका भए। उनका चार हात र तीन आँखा थिए, दिव्य शरीर लिएर उभिएका थिए, उनको शरीरको वर्ण दिव्य र सुन्दर थियो। दिव्य गहनाले अलङ्कृत भएका थिए। उनले त्रिशूल, पाश, दण्ड, धनुष, सिक्री र मेखला लगाएका थिए। तेजले गर्दा उनी दोस्रा शङ्कर नै हुन् कि भनेझैं गरेर सुशोभित भएका थिए ॥६७–७१½॥

भगवान् शम्भुबाट महत्त्वपूर्ण वर पाएर नन्दी अत्यन्त खुसी भए। त्यसपछि उनी शिवजीका गणहरूका रक्षक भएर स्वामी बने ॥७१–७२॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा नन्दिकेश्वरलाई वरप्रदाननामक अठहत्तरौं अध्याय पूरा भयो।

---

२२. पुण्यभूमौ इति न.सं.पु.पाठः।
२३. न वक्तव्यामिमां वार्ताम् इति न.सं.पु.पाठः।
२४. तस्या नाम्ना इति न.सं.पु.पाठः।
२५. नन्दिः सहर्षं ह्मलभत्तदासौ इति न.सं.पु.पाठः।

# ऊनाशीतितमोऽध्यायः

## श्लेष्मान्तकाय वरप्रदानम्

अगस्त्य उवाच

कोऽसौ श्लेष्मान्तको नाम कस्मात्प्रलब्धवान् वरम्। सिद्धाद्रिरिति विख्यातस्तस्य नाम्ना कथं भवेत् ॥१॥
सर्वज्ञात्मज सेनानीः सर्ववार्ताविशारदः। कुशलोऽसि च तद्वक्तुं वदैतन्मे यथाविधि ॥२॥

स्कन्द उवाच

अस्ति कश्चित्समुद्दिष्टः क्षितौ सिद्धाद्रिसंज्ञकः। पादे हिमवतः पुण्यस्तपोवनगुणान्वितः ॥३॥
दक्षिणस्यां योजनैकदूरे[1] मुञ्जवतो दिशि। यत्राऽध्यास्ते शिवा देवी गुह्याख्या वरदाऽनिशम् ॥४॥
बहुतीर्थैः समं यत्र वाग्वती सरितां वरा। उवाह सततं पुण्या चेतःकाङ्क्षाफलप्रदा ॥५॥
वनं मनोरमं पुण्यं सिद्धर्षिभिः प्रसेवितम्। बहुतीर्थाश्रयं रम्यं तपोवनं महत्तरम् ॥६॥
तत्र श्लेष्मान्तको नाम नागेन्द्रो वसते भयात्। विवादे चाऽऽत्मभङ्गात्स गरुडेन समं पुरा ॥७॥
सिद्धाद्रिञ्च[2] समाश्रित्य तेपे कश्यपसम्भवः। शिवार्चको हरात्माऽसौ तन्मनस्कोऽनिलाशनः ॥८॥
सहस्रवत्सरं व्याप्य तपश्चकार तन्मनाः। कठोरं प्रियया सार्द्धं रुद्रभक्तस्तदर्चकः ॥९॥
सहस्रवत्सरान्ते च ह्याविर्भूतो महेश्वरः। वरं दातुञ्च तत्रैव भक्ताय[3] भक्तनन्दनः ॥१०॥
व्याजहार वचस्तस्मै वरेण्यो वरदो विभुः। दन्तानां किरणैस्तत्र विद्योतयन् दिशो दश ॥११॥

ईश्वर उवाच

अहो धन्यतमो वत्स श्लेष्मान्तक विकिल्विष। सुतपास्त्वं यतो भक्त सुकठोरं तपः कृतम् ॥१२॥
वरं वरय नागेन्द्र यत्त्वं वाञ्छसि साम्प्रतम्। ददाम्यहञ्च तत्सर्वं तपःकृशाय[4] तेऽधुना ॥१३॥

---

## अध्याय - ७९

## श्लेष्मान्तकलाई वरप्रदान

अगस्त्य मुनिले भन्नुभयो- हे कार्तिक स्वामी ! हे शिवपुत्र ! हजुर सबै कुरा जान्नुहुन्छ, बताउन पनि सक्नुहुन्छ। यो श्लेष्मान्तक भनेको को हो ? यसले कसबाट वर पायो ? यसलाई किन सिद्धाचल भनियो ? यो सबै यथार्थ मलाई बताइदिनुहोस् ॥१-२॥

कार्तिक स्वामीले भन्नुभयो - हिमालय पर्वतमा तपस्या गर्नका लागि सजिलो पर्ने पवित्र सिद्धाद्रि नाम गरेको एउटा पर्वत। मुञ्जवान् पर्वतबाट दक्षिणतिर एक योजन दूरीमा रहेको त्यस पर्वतमा वरदायिनी गुह्येश्वरी देवी सधैँ बस्नुहुन्छ। त्यस ठाउँमा चित्तको आकाङ्क्षालाई पूर्ण गर्न सक्ने विभिन्न तीर्थले युक्त भएकी पवित्र वाग्वती नदी बगेकी छन्। त्यहाँ सुन्दर एउटा पवित्र वन छ। त्यस ठाउँमा सिद्ध ऋषिहरू बसेका छन्, विभिन्न तीर्थ र तपस्या गर्ने स्थलले युक्त भएको त्यो वन अत्यन्त ठूलो छ। अघि त्यस ठाउँमा झगडा पर्दा गरुडले आफूलाई मार्छ भन्ने डरले श्लेष्मान्तक नाम गरेको नाग बस्ने गर्दथ्यो। कश्यपबाट पैदा भएको शिवस्वरूप त्यो नागराज हावा खाएर शिवजीको पूजा गर्दै तपस्या गर्दथ्यो। रुद्रको भक्त त्यस नागराजले आफ्नी पत्नीका साथ हजार वर्षसम्म शिवजीको पूजा गरेर कठोर तपस्या गर्‍यो ॥३-९॥

भक्तवत्सल भगवान् महेश्वर हजार वर्षको अन्त्यमा भक्तलाई वर दिनका निमित्त त्यस ठाउँमा प्रकट हुनुभयो। त्यस ठाउँमा आएर भगवान् महादेवले आफ्ना दाँतका किरणहरूले दशै दिशा उज्यालो पार्दै वर दिनका लागि बोल्नुभयो ॥१०-११॥

ईश्वरले भन्नुभयो - हे बाबु निष्पाप श्लेष्मान्तक ! तिमी तपस्वी हौ। हे भक्त ! तिमीले कठोर तपस्या गर्‍यौ। हे नागेन्द्र ! तिमीलाई जे इच्छा लागेको छ, त्यो वर माग। तपस्याले शरीर सुकाउने व्यक्तिको कल्याणका लागि म त्यो सबै वर दिन्छु ॥१२-१३॥

---

१. योजनैकसुदूरस्थो याम्ये इति न.सं.पु.पाठः।
२. नागराज इति न.सं.पु.पाठः।
३. भक्तिने इति न.सं.पु.पाठः।
४. तपःकृशहि इति न.सं.पु.पाठः।

नाग उवाच

नमो देवाधिदेवाय देवानां पतये नमः । सर्वदाय च शर्वाय भूतिदाय विभूतये[५] ॥१४॥

भव्याय भवरूपाय भवानीपतये नमः । भास्वद्देवाय चोग्राय भूतानां पतये नमः ॥१५॥

भवान्यै भवहारिण्यै भूतिदायै नमोऽम्बिके । भवानां भवहारिण्यै भक्तवत्सलरूपिणि ॥१६॥

मां समुद्धर देवेश दुष्कृतेन पुरा मम । लब्धवन्तञ्च सर्पाङ्गमसद्भवार्णवे स्थितम् ॥१७॥

त्वयि भक्तिरतो नित्यं त्वत्पूजने रतोऽनिशम् । त्वदङ्घ्रिसेवने निष्ठा यावज्जीवं भवेन्मम[६] ॥१८॥

त्वन्निकटे सदास्थानं नेच्छामि चाऽपरं प्रभो । एतदेव वरं याचे चाऽचलं नाऽपरञ्च मे ॥१९॥

ईश्वर उवाच

एवमस्तु भुजङ्गेन्द्र यत्त्वं वदसि तत्तथा । भूयो ददामि ते वत्स तपस्विन् शृणु यद्वरम् ॥२०॥

सुरासुरैरवध्यश्च नित्यं मत्प्रियकारकः । भविष्यसि भुजङ्गेन्द्र स्वच्छन्दगतिरेव च ॥२१॥

वासुकेश्च सखित्वेन चरिष्यसि भुजङ्गम । प्रमथैः सह तां भीतिं परित्यज्य हि शत्रुजाम्[७] ॥२२॥

इदं वनञ्च सिद्धाद्रिनामकं सज्जनैर्युतम्[८] । भविष्यति जगत्ख्यातं तव नाम्ना भुजङ्गम ॥२३॥

स्कन्द उवाच

दत्त्वा वरं हरस्तस्मै तत्स्थानं विससर्ज सः । सूर्यायुताभयानस्थ उत्पपाताम्बरे विभुः ॥२४॥

व्याजहार वचो देवीं[९] विस्मयोत्फुल्ललोचनाम् । निरीक्ष्य पार्श्वगां ताञ्च[१०] भगवानिदमब्रवीत् ॥२५॥

---

नागले भन्यो – हे देवताका पनि देवता ! हजुरलाई नमस्कार छ। सम्पूर्ण कुरा दिन सक्ने, ऐश्वर्यदाता, शरीरमा खरानी लगाउने, देवताका स्वामी शिवजीलाई नमस्कार छ। कल्याणदायक, भवानीका पति, संसारको रूप लिने ईश्वरलाई नमस्कार छ। चम्किला देवता भएका उग्रस्वरूप प्राणीहरूका स्वामीलाई नमस्कार छ। हे भक्तमाथि माया गर्ने भगवती ! संसारको बाधालाई हरण गर्ने, कल्याणदायिनी, प्राणीका दुःखलाई हरण गर्ने भवानी हजुरलाई नमस्कार छ। अघि गरेका दुष्कृत्यले गर्दा मैले असत्य संसाररूपी यस समुद्रमा सर्पको शरीर पाएँ। हे भगवन् ! मलाई उद्धार गर्नुहोस्। हे भगवन् ! यो व्यक्तिले हजुरको भक्तिमा सधैँ संलग्न हुन पाओस्, हजुरकै पूजामा सधैँ लाग्न पाओस्, हजुरको पाउको सेवामा बाँचुञ्जेलसम्म यसको निष्ठा जागोस्। हजुरको नजिकै बस्ने ठाउँ पाऊँ, हे प्रभो ! अरू मलाई केही चाहिँदैन, यही निश्चल वर म चाहन्छु, अरू चाहन्नँ ॥१४-१९॥

ईश्वरले भन्नुभयो – हे नागराज ! तिमी जे भन्छौ, त्यही कुरा हुन्छ। हे तपस्वी बाबु ! तिमीलाई म फेरि अर्को पनि वर दिन्छु, सुन। हे नागराज ! मेरा प्रियतम तिमीलाई देवता र राक्षसले मार्न सक्दैनन्। तिम्रो गति स्वच्छन्द हुनेछ। हे नागराज ! तिमी वासुकिलाई साथी बनाएर शत्रुद्वारा हुने डरबाट मुक्त भएर प्रमथ गणहरूका साथ हिँडडुल गर्न सक्छौ। हे नाग ! पुण्य गर्ने व्यक्तिहरूले बसोवास गरेको यो सिद्ध पर्वत र यो वन तिम्रो नामबाट संसारमा प्रसिद्ध हुनेछ ॥२०-२३॥

कार्तिक स्वामीले भन्नुभयो – यसरी महादेवले त्यस नागराजलाई वर दिएर त्यसलाई बिदा गर्नुभयो। त्यसपछि भगवान् शङ्कर दश हजार सूर्यको जस्तो कान्ति भएको यानमा चढेर आकाशमा उड्नुभयो ॥२४॥ आश्चर्यले ठूला-ठूला आँखा तुल्याएकी, छेउमै बसेकी देवीलाई हेरेर भगवान्ले भन्न लाग्नुभयो ॥२४-२५॥

---

५. च भूतिने इति न.सं.पु.पाठः ।

६. भवत्वयम् इति न.सं.पु.पाठः ।

७. प्रमथैः सन्ततं सार्द्धं परित्यज्य ह्यराजितम् इति न.सं.पु.पाठः ।

८. इदं वनञ्च सिद्धाद्रिं पुण्यकृद्भिर्निषेवितम् इति न.सं.पु.पाठः ।

९. देव्यै इति न.सं.पु.पाठः ।

१०. देवीम् इति न.सं.पु.पाठः ।

चन्द्रभागातटे देवि पश्य चन्द्रसमोज्ज्वलाम् । भगवतीं महेशानीं वाराहीञ्च सरिद्वराम् ॥२६॥
ज्येष्ठिलाञ्च नदीं पुण्यां पुण्यां शोकवतीन्तथा । वाग्वतीञ्च महापुण्यामार्यां मणिमतीन्तथा ॥२७॥
वीरां भद्रां पुरः पश्य गोदावरीञ्च गोमतीम् । पश्य धर्मनदीं पुण्यां ब्रह्मनदीं प्रभावतीम् ॥२८॥
सरस्वतीं महापुण्यां विष्णुधाराञ्च गोपदीम् । मातृनदीं पुरः पश्य नवधारां हरिस्रवाम् ॥२९॥
चन्द्रस्रवां प्रिये पश्य शक्रावतीञ्च मालिकाम् । रुद्रपदीं महापुण्यां विष्णुपदीं तथापराम् ॥३०॥
पश्य तीर्थान्यनेकानि मत्प्रभावोद्‌गतानि च । लोकोद्धरणहैतुक्य इमास्तव विभूतयः ॥३१॥
तीर्थानि च मदंशानि सर्वा नद्यस्त्वदंशकाः । मद्रूपं पर्वतं पश्य योगिनीं तव रूपिणीम्[11] ॥३२॥
मणिचूडं महापुण्यं मणिह्रदं हरेर्गिरिम् । सर्वमनोहरं दिव्यं द्रुमैः पुष्पैर्विराजितम् ॥३३॥
सिद्धारण्यं तपःस्थानं पश्याधस्त्वं मनोहरम् । अत्रैव च क्रीडिष्यामि मृगरूपेण साम्प्रतम् ॥३४॥
मृगयूथैः समं देवि रहस्यमिव कानने । मृगयूथं समाविश्य रम्ये वनवरे शुभे ॥३५॥
मृगरूपं समास्थाय चरिष्यामि सुलोचने । यदा मद्दर्शनोद्युक्ताः ब्रह्मविष्णुपुरन्दराः ॥३६॥
पृच्छन्ति यर्हि मद्रूपं कथ्यतां सुरसुन्दरि ।

स्कन्द उवाच

एवं सम्भाष्य भगवान् देवीं देवेन्द्रवन्दिताम् ॥३७॥
अवततार यानं स्वं व्योम्नस्तत्र घटोद्भव । ततो विसृज्य तां देवीं स्वयमन्तर्दधे विभुः ॥३८॥
सापि देवी च गुह्याख्या तत्रैवाऽन्तरधीयत ॥३९॥
सिद्धाटनं देवमनोहरं तत् श्लेष्मान्तकञ्चेति च विश्रुतं हि ।
नाम्ना च तस्यैव तपस्विनस्तल्लोकेष्वजस्रं सुतपःस्थलं वै[12] ॥४०॥
इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे श्लेष्मान्तकवरप्रदानं नामैकोनाशीतितमोऽध्यायः ॥७९॥

---

भगवान्ले भन्नुभयो – हे देवी ! चन्द्रभागा नदीको तटमा चन्द्रमाजस्तै उज्याली भगवती महेश्वरी वाराहीलाई र नदीलाई हेर । पुण्यात्मा ज्येष्ठिला, शोकवती, वाग्वती, अत्यन्त पुण्यदायिनी पूजनीय मणिमती, वीरभद्रा, गोदावरी र गोमती नदीलाई हेर । त्यस्तै पवित्र धर्मनदी, ब्रह्मनदी र प्रभावतीलाई पनि हेर । पुण्यदायिनी सरस्वती, विष्णुधारा, गोपदी, मातृनदी, नवधारा र हरिस्रवालाई अगाडि हेर । हे प्रिये ! चन्द्रस्रवा, शक्रवती, मालिक, रुद्रवती र अत्यन्त पुण्यदायिनी अर्को विष्णुपदीलाई हेर । मेरो प्रभावबाट पैदा भएका अनेक तीर्थहरू छन् । संसारको उद्धारका निमित्त जन्मिएका यी सबै नदीहरू तिम्रा विभूति हुन् । तीर्थहरू जति मेरा अंश हुन्, नदी जति सबै तिम्रा अंश हुन्, शिखरहरू मेरा रूप हुन् र योगिनीहरू सबै तिम्रा रूप हुन् भन्ने कुरा जान ॥२६–३२॥

यो मणिचूड पर्वत अत्यन्त पुण्यदायक छ । यो मणिह्रद र मणिचूड पर्वत सबैभन्दा सुन्दर छ । यो विभिन्न वृक्ष र फूलहरूले सुशोभित छ । तपस्या गर्ने सुन्दर सिद्धारण्यलाई तल हेर । म यसै ठाउँमा मृगको रूप लिएर अहिले खेल्दैछु । हे देवी सुनयने ! घना जङ्गल भएको यस क्षेत्रमा लुकेर मृगका बथानसँग मिलेर मृगको बथानभित्र पसेर मृगको रूप लिएर म घुम्दछु । हे देवी ! यस राम्रो वनमा मृगको रूप लिएर घुमिरहेको मलाई दर्शन गर्नका लागि ब्रह्मा, विष्णु, इन्द्र आएर मेरो रूप कस्तो छ भनेर सोध्नेछन्, बताउनुहोस् ॥३३–३६॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! इन्द्रकी पनि पूज्य भगवती देवीलाई यति कुरा भनेर शिवजीले आफ्नो यान आकाशबाट त्यसै ठाउँमा ओराल्नुभयो । त्यसपछि देवीलाई बिदा गरेर भगवान् शिव अन्तर्धान हुनुभयो । गुह्यकाली देवी पनि त्यहीं अन्तर्धान हुनुभयो ॥३७–३९॥

ज्यादै सुन्दर त्यो सिद्धाटन त्यसै तपस्वीको नामले श्लेष्मान्तक वनका रूपमा प्रसिद्ध भयो । संसारमा यो तपस्या गर्ने थलो बन्यो ॥३९॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा श्लेष्मान्तकलाई वरप्रदाननामक उनान्असिऔं अध्याय पूरा भयो ।

---

११. मद्रूपान् शेखरं विद्धि योगिनीस्तव रूपिण इति न.सं.पु.पाठः । १२. सुतपःस्थलोऽभूत् इति न.सं.पु.पाठः ।

# अशीतितमोऽध्यायः

श्रीपशुपतेः क्रीडा

स्कन्द उवाच

ततोऽयुतान्तवर्षे च मृगरूपं दधार सः । तत्र श्लेष्मान्तकारण्ये भगवान् भूतभावनः ॥१॥
मुञ्जवच्छिखरे रम्ये दत्त्वा वरञ्च नन्दिने । मार्गकृष्णचतुर्दश्या दिने भौमसमन्विते[1] ॥२॥
त्रिनेश्च सुवर्णाभ एकशृङ्गी मनोहरः । तुङ्गस्रवो विचित्राङ्गो सुदंष्ट्रश्चकितेक्षणः ॥३॥
विवेश मृगयूथे वै इच्छागतिर्मृगोत्तमः । प्रेक्ष्य मृगाः सुदेहाङ्गं चक्रुर्हार्दं सुनिर्मलम्[2] ॥४॥
कृतार्थं मेनिरे तत्र स्वमात्मानं विभीषणाः । अनेन सङ्गमान्नोऽत्र भद्रस्थानं भविष्यति ॥५॥
कृत्वेति चेतसा सर्वे जहुर्दुःखानि सर्वशः । यत्र यत्र प्रयातं वै हरेण मृगरूपिणा ॥६॥
व्रजन्ति स्म मृगास्तस्य भूत्वा तेऽनुचरा मुदा । क्रीडति स्म मुदा तत्र मृगयूथमितस्ततः[3] ॥७॥
कृत्वेति पतिरस्माकं पुरोधायाञ्जसा शिवम् । लिलिहुस्ते[4] मृगास्तं वै चाऽतिहार्देन यूथपाः ॥८॥
आत्मा चाऽयमिति कृत्वा[5] तदङ्गेषु मुदाऽन्विताः । कण्डूयन्ति स्म सुस्नेहं तद्विग्रहेषु कुम्भजः ॥९॥
केचिन्मृगा मुखेनैव हार्दं रूपमिति स्वकम् । ववल्गुस्तत्र तैः सार्द्धं हरो हरिणरूपधृक् ॥१०॥
अचीक्रिडच्च सानन्दं[6] क्वचित्स्थानं विलङ्घयन् । नानापुष्पलताकीर्णे चाऽक्रीडत्पशुपो भृशम् ॥११॥
तत्पुष्पाणि समाघ्राय मृगैः सममितस्ततः । निदाघेऽपि तथा भूयो मृगयूथैः समं विभुः ॥१२॥

---

अध्याय – ८०

श्रीपशुपतिका लीलाविहार आदिको वर्णन

कार्तिक स्वामीले भन्नुभयो – त्यस दश हजार वर्षपछि प्राणीमाथि दया गर्ने भगवान् शङ्करले श्लेष्मान्तक जङ्गलमा मृगको रूप धारण गर्नुभयो। मार्गकृष्ण चतुर्दशी मङ्गलबारका दिन मुञ्जवाने नाम गरेको पर्वतको शिखरमा भगवान्ले नन्दीलाई वर दिनुभयो। त्यसपछि सुन्दर तीन आँखा, पहेंलो वर्ण, एक सिङ, लामा कान, छिरबिरे अङ्ग, चञ्चल दृष्टि, राम्रो दाँत भएको अनौठो खालको मृग भएर भगवान् शङ्कर बिजुली चम्केजस्तै गरी दौडनुभयो र मृगको बथानमा प्रवेश गर्नुभयो। त्यस्तो मृगलाई देखेर सबै मृगहरूले बारम्बार हृदयले नै माया गरे ॥१–४॥

त्यहाँ यस मृगको सङ्गतले गर्दा हाम्रो कल्याण हुनेछ भन्ने चित्तले ठानेर आफूलाई भयमुक्त हुँदै कृतार्थ सम्झिए। त्यसपछि उनीहरूले सम्पूर्ण दुःख त्याग गरे। जहाँ–जहाँ मृगरूप त्यो शिव जान्थ्यो, त्यहाँ–त्यहाँ ती मृगहरू पछिपछि लागेर जान्थे। यसरी त्यस ठाउँमा मृगका बथानहरूले मृगरूप शिवका साथ धेरै क्रीडा गरे। यो हाम्रो स्वामी हो भन्ने ठानेर मृगरूप शिवलाई अगाडि लगाएर बथानका नाइकेलाई त्यहाँ मृगहरू चाट्ने गर्दथे ॥५–८॥

हे अगस्त्य मुनि ! मृगहरूले खुसी हुँदै शिवरूप मृगको अङ्गलाई आफ्नै अङ्ग ठानेर त्यस मृगको शरीरलाई अत्यन्त मायाले कन्याए। कुनै मृगहरूले असाध्यै राम्रो रूप देखेर आफ्नो मुख जोडे। त्यहाँ उनीहरूका साथ हरिणरूपधारी शिवजी उफ्रनुभयो। त्यहाँ मृगरूपधारी शिवले विभिन्न ठाउँलाई नाँघ्दै खेल खेल्नुभयो। विभिन्न किसिमका फूल र लहराले भरिएको त्यस ठाउँमा मृगरूपधारी पशुपतिले खूब क्रीडा गर्नुभयो। मृगरूपधारी शिव मृगहरूका साथ फूलहरू सुँघ्दै यताउति हिँड्नुहुन्थ्यो। गर्मीमा पनि मृगको बथानका साथै एकै ठाउँमा बस्नुहुन्थ्यो ॥९–१२॥

---

१. वै भौमेन च समन्विते इति न.सं.पु.पाठः ।
२. चक्रुर्हार्दाशितं भृशम् इति न.सं.पु.पाठः ।
३. मृगयूथा इतस्तत इति न.सं.पु.पाठः ।
४. लेलिह्यन्ते इति न.सं.पु.पाठः ।
५. आत्मानमिति कृत्वा च इति न.सं.पु.पाठः ।
६. अचिक्रीडत्सहानन्दम् इति न.सं.पु.पाठः ।

पीत्वा तज्जलमक्रीडत् कन्दरासु व्रजन्मुदा। शाद्वलानि सुखं खादन् तथा ग्रीष्मे मृगाङ्गधृक् ॥१३॥
सुविहारं पुनश्चक्रे मृगैः प्रसेवितो वने। गुहासु निवसन्नित्यमक्रीडत्पशुपो भृशम् ॥१४॥
यूथपैश्च मृगैः सार्द्धं सकृद् भुक्त्वा तृणानि च। शरदि वै तथा भूयो मृगश्रेष्ठो मृगैः समम् ॥१५॥
अक्रीडत्तद्वने नित्यं पतत्फलानि भक्षयन्। हेमन्ते च मृगैः सार्द्धं तद्वने चरितो विभुः ॥१६॥
गह्वरेषु वसन्नूनं तृणमूलान्यभक्षयत्। ता वनस्पतयस्तत्र फलन्ति स्म फलानि च ॥१७॥
प्रेक्ष्य पशूत्तमं तं वै विस्मयोत्फुल्लकन्धराः। कुञ्जेषु च मुदा तत्र स्थितो रोमन्थयन् विभुः ॥१८॥
मृगरूपो मृगैः सार्द्धमक्रीडच्च[७] पृथक् पृथक्। लताः सुपुष्पिताः सर्वाः फलन्ति स्म फलान्यपि[८] ॥१९॥
आलोक्य पशुपं तत्र मृगयूथपुरःसरम्। मन्दं मन्दं ववुर्वाता मन्दसुरभिशीतलैः ॥२०॥
सर्वकाले यथायोग्यैस्तमभिप्रेक्ष्य विस्मिताः[९]। ववृषुः[१०] पुष्पवर्षाणि वृक्षाः प्रोत्तुङ्गकन्धराः।
यत्र तत्र मृगो यातो[११] लक्ष्यीकृत्य विभुर्मुदा ॥२१॥
सूर्यस्तेपे हि तं प्रेक्ष्य सुस्नेहेन विचित्रकम्। तत्र तस्य सुखायैव कृत्वेति मनस्यद्भुतम् ॥२२॥
शिशिरेऽपि च शीतांशुः स्वल्पं हिमं स्रवन्नभूत्[१२]। व्योम्नः प्रेक्ष्याऽद्भुतं रूपं हार्देन पशुपं तथा ॥२३॥
अभूवन् पक्षिणः प्रेक्ष्य स्थगितगतयोऽपि तम्। अद्भुतं चित्ररूपञ्च लिखिता इव[१३] संस्थिताः ॥२४॥
स्थगितगतयो भूमन् तत्रैव पशवः पुनः। तं प्रेक्ष्याऽपि कदा दृष्टश्चेदृशः शुशुचुर्भृशम्[१४] ॥२५॥

---

त्यहाँको पानी पिएर गुफामा चहार्दै, भर्खर उम्रिएका घाँसहरू आनन्दसित खाँदै मृगरूपधारी शिवले ग्रीष्म ऋतुमा पनि मृगहरूका साथ क्रीडा गर्नुभयो। पशुपतिले सधैँ गुफामा बसेर विभिन्न किसिमका खेलहरू खेल्नुभयो। शरद् ऋतुमा पनि मृगका बथानहरूका नाइकेका साथमा चरेर घाँस खाँदै क्रीडा गर्नुभयो। त्यसरी नै हेमन्त ऋतुमा त्यसबेलाका फलफूलहरू खाँदै मृगहरूका साथ त्यस वनमा मृगरूपधारी शिवजीले विचरण गर्नुभयो। गुफामा बसेर उहाँले झारपातहरू खानुभयो। त्यस ठाउँका रुखहरू पनि खूबसित फलफूल दिन्थे ॥१३–१७॥

उत्तम खालको त्यस पशुलाई देखेर बडो आश्चर्यचक्ति हुँदै पृथ्वी खुसी हुन्थिन्। त्यो कुञ्जमा जन्तु भएर भगवान् शिवजी उग्राएर बस्नुभयो। मृगको रूप लिएर भगवान् शिवले मृगहरूका साथ फरक–फरक क्रीडाहरू गर्नुभयो। त्यहाँ सबै लहराहरू खूबसित फुलेर फलेका थिए। मृगको बथनमा मृगको रूप लिएर घुम्न लागेका शिवजीलाई देखेर वायु पनि शीतल र सुगन्धित भएर विस्तार–विस्तार वहन थाले। जुन बखतमा जे चाहिन्छ त्यो खाँचो नभएको देखेर सबै आश्चर्यचक्ति हुन्थे। अग्ला डाँडाका रुखहरूले जता–जता मृगरूपधारी शङ्कर हिँड्नुहुन्थ्यो, उतै–उतै फूल वर्षा गर्दथे। सूर्यले पनि माया गरेर उहाँको सुखका लागि मनमुताविक विचित्र किसिमका ताप दिनुहुन्थ्यो ॥१८–२२॥

शिशिर ऋतुमा चन्द्रमाले अद्भुत सुन्दर रूप देखेर मृगरूपधारी पशुपतिमाथि आकाशबाट थोरै मात्र शीत वर्षा गर्नुहुन्थ्यो। पक्षीहरू विचित्र किसिमको अद्भुत रूपलाई देखेर गति रोकिएका छँदा चित्रमा लेखिएका जस्ता बन्न पुगे। पशुहरू पनि गतिहीन भई त्यहीँ उभिएर त्यस मृगलाई हेर्दै यस्तो मृग पहिले कहिल्यै कहीँ कतै देखिएको थियो र भनी छक्क पर्थे ॥२३–२५॥

---

७. सार्द्धमक्रीडयत् इति न.सं.पु.पाठः।
८. स्वकं क्वचित् इति न.सं.पु.पाठः।
९. विस्मया इति न.सं.पु.पाठः।
१०. ववर्षु इति न.सं.पु.पाठः।
११. मृगं यातम् इति न.सं.पु.पाठः।
१२. स्वल्पं हिमं स्रवत्तथा इति न.सं.पु.पाठः।
१३. यत्रैवमेव इति न.सं.पु.पाठः।
१४. दृष्टं कृत्वेति स्मेदृशं मृगम् इति न.सं.पु.पाठः।

सिंहशार्दूलभल्लूका व्याघ्रखड्गगजा वृकाः। भूदारशूकराश्चैव[१५] मृगधूर्ताश्च मर्कटाः ॥२६॥
तन्मृगस्य[१६] मुने तत्र गतिञ्च बाधितुं कदा। अभूवन्न समर्थास्ते तं प्रेक्ष्य हार्दचेदसः ॥२७॥
अपि पुरार्दितास्तैश्च स्वच्छन्दं विचरन्ति ते। जहुर्भयानि चैतेभ्यो मृगाश्च तत्पुरोगमाः[१७] ॥२८॥
विचरन्ति स्म चारण्ये मृगाश्च तत्पुरोगमाः। एवं भयानि सन्त्यज्य स्वच्छन्दगतयस्तदा ॥२९॥
कृष्णसाररुरुन्यङ्कुहरिणास्तद्वने मुदा। कुञ्जेषु वृक्षमूलेषु चिक्रीडुस्ते यथासुखम् ॥३०॥
विचरन्ति स्म भूयस्ते दरीषु च गुहासु च। वाग्वतीसलिलेष्वार्य सङ्क्रीड्य तत्तटेषु च ॥३१॥
क्वचित्सिद्धाश्रमे रम्ये तद्भृगुपतनेषु च। चन्द्रार्कतीर्थतीरे ते क्रीडन्ति स्म[१८] महत्सुखम् ॥३२॥
परिवार्य्य मृगैर्भूयो निकुञ्जे निर्जने क्वचित्। मृगरूपधरो रुद्रो रेमे बहुसुखं तदा ॥३३॥

एवं शिवोऽसौ नृमृगैः समञ्च क्रीडाञ्चकारातिसुखं पशूनाम्।
दिव्यं दशाब्दं विपिने च नाके देवा न शेकुर्हरदर्शनाय ॥३४॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये पशुपतिक्रीडनन्नामाशीतितमोऽध्यायः ॥८०॥

---

सिंह, बाघ, भालु, चितुवा, गैँडा, हात्ती, ब्वाँसा, हुँडार, स्याल र बाँदरहरूले मृगरूपधारी शिवलाई देखेर हृदयदेखि नै प्रसन्न हुँदै उहाँको गतिलाई रोक्न सकेनन्। पहिले तिनीहरू सिंह, बाघ आदि जन्तुद्वारा पीडित थिए, अब सबै मृगहरू मृगरूपधारी शिवलाई अगाडि लगाएर आनन्दसित घुम्न थाले। यिनीहरू सबै पशुहरूदेखि डराउन छोडे। उहाँलाई अघि लगाएर सबै मृगहरू जङ्गलमा सबै भयबाट मुक्त हुँदै त्यहाँ स्वच्छन्दसित विचरण गर्न थाले। कृष्णसार, रुरु, न्यङ्कु नाम गरेका हरिणहरू त्यस जङ्गलका झाडी र रुखका फेदमा आनन्दसित खेल्दथे ॥२६–३०॥

हे अगस्त्य मुनि ! ती मृगहरू गुफामा, ओडारमा, वाग्वतीको जलमा र वाग्वतीको तीरमा खेलेर हिँड्डुल गर्दथे। कहिले सिद्धाश्रममा, कहिले झरनाको प्रवाहमा, कहिले चन्द्रार्कतीर्थको तीरमा तिनीहरू आनन्दसित खेल्दथे। मृगहरूका बथानसित मृगरूप लिने भगवान् शङ्कर कहिले निर्जन वनको निकुञ्जमा सुखपूर्वक घुम्नुहुन्थ्यो ॥३१–३३॥

यसरी मृगरूप लिएर त्यस जङ्गलमा भगवान् शङ्कर दिव्य दश वर्षसम्म घुम्दा स्वर्गमा देवताहरूले उहाँको दर्शन गर्न पाएनन् ॥३४॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा भगवान् श्रपशुपतिको वनविहारनामक असियौं अध्याय पूरा भयो।

---

१५. हून्डारशूकराश्चैव इति न.सं.पु.पाठः।
१६. तन्मृगाणाम् इति न.सं.पु.पाठः।
१७. तत्पुरोगमात् इति न.सं.पु.पाठः।
१८. अक्रीडयन् इति न.सं.पु.पाठः।

# एकाशीतितमोऽध्यायः

## ब्रह्मादिदेवकृतं श्लेष्मान्तकवनदर्शनम्

स्कन्द उवाच

ततः कस्मिन्नपि काले[1] भगवान् पाकशासनः। अदर्शनान्महेशस्य त्रिविष्टपं विहाय च ॥१॥
सम्मन्त्र्य गुरुणा सार्द्धं देवैर्लोकैश्च यानगैः। विष्णुना सहितो गत्वा ब्रह्माणमिदमब्रवीत् ॥२॥

इन्द्र उवाच

भगवन् पद्मगर्भाभ पद्मयोने ह्ययोनिज। त्रातुमर्हसि नो नाथ दुःखाच्छम्भोरदर्शनात् ॥३॥
शम्भुं विना न लोकानां कार्यं निष्पन्नमात्मभूः। लोकस्यालोकनं शम्भुं न पश्यामोऽधुना विभो ॥४॥
इदं रहस्यं विप्रेन्द्र ज्ञायते यदि दानवैः। क्रियते हरणं लोभान्मम राज्यस्य निश्चयम् ॥५॥

ब्रह्मोवाच

मार्गयामो वयं शम्भुं हरे लोकेषु साम्प्रतम्। सप्तद्वीपेषु भो देवाः पर्वतेषु दरीषु च ॥६॥
अवश्यमेव प्राप्स्यामो[2] मा मा खेदय मानसम्। स्वं स्वं यानं समास्थाय गच्छत[3] निर्जरा ध्रुवम् ॥७॥

स्कन्द उवाच

इत्याकर्ण्य वचो देवा ब्रह्मणो मुखसम्भवम्। तं मार्गितुं ययुश्चेशं विधिविष्णुवृषादयः ॥८॥
रुद्रलोके ययुर्देवा आर्यलोके च मार्गितुम्। शक्रलोकेऽजलोके तं विष्णुलोके च मामके ॥९॥
गाणपत्ये च चान्द्रे वै नाक्षत्रके तथाऽपरे। यमलोके पुनः सौरे कौबेरके च सत्वरम् ॥१०॥
अग्निलोके च नैर्ॠत्ये वायव्ये वारुणे पुनः। अमार्गयँस्तमीशानं ब्रह्मादयोऽमराः पुरा ॥११॥
सप्तद्वीपेषु देशेषु समुद्रेषु समन्ततः। दिक्पर्वतेषु तं देवा अमार्गयँस्तथोत्तरे ॥१२॥

---

## अध्याय – ८१

### ब्रह्मादि देवताद्वारा श्लेष्मान्तकवनको दर्शन

कार्तिक स्वामीले भन्नुभयो – त्यसको केही समय बितेपछि भगवान् इन्द्रले स्वर्गलोक छोडेर गएका शङ्करलाई देख्नुभएन। त्यसपछि उहाँले बृहस्पतिका साथ सल्लाह गरेर देवताहरू र विष्णुलाई यानमा लिएर ब्रह्माजी भएको ठाउँमा जानुभयो र भन्नुभयो ॥१–२॥

इन्द्रले भन्नुभयो – हे भगवन् ! हे पद्मयोनि ! हे अयोनिजन्मा ! शिवजीलाई देख्न नपाएर भएको दुःखबाट हामीहरूको रक्षा गर्नुहोस्। हे प्रभु ! हे ब्रह्माजी ! शिवजी नभईकन संसारको कुनै काम हुन सक्दैन, संसारका दर्शनीय भगवान् शङ्करलाई हामीले देखेनौं। हे ब्रह्माजी ! यो रहस्य यदि दानवहरूले थाहा पाए भने लोभले मेरो राज्य अवश्य हरण गर्नेछन् ॥३–५॥

ब्रह्माले भन्नुभयो– हे हरि ! अब हामीहरू शिवजीलाई संसारमै खोज्नेछौं। हे देवता हो ! सातै द्वीप, गुफा र पहाडमा खोजौं। हे इन्द्र ! तिमी दुःख नमान, आफ्नो–आफ्नो यानमा बसेर शम्भुलाई खोज्न जाओ ॥६–७॥

कार्तिक स्वामीले भन्नुभयो– ब्रह्माजीको मुखारविन्दबाट निस्किएको वचन सुनेर ब्रह्मा, विष्णु, धर्म आदि गरिएका देवताहरू शङ्करको खोजीका लागि हिंडे। देवताहरू रुद्रलोक, देवीको लोक, इन्द्रलोक, विष्णुलोक र स्कन्दलोकमा शङ्करलाई खोज्न गए। सर्वप्रथम ब्रह्मा आदि देवताहरूले गणपतिलोक, चन्द्रलोक, नक्षत्रलोक, यमलोक, सूर्यलोक, कुबेरलोक, अग्निलोक, नैर्ॠत्यलोक, वायव्यलोक र वरुणलोकमा गएर भगवान् शङ्करको खोजी गरे। सातै द्वीप, सबै देश, सबै समुद्र, सबै दिशा र सबै पर्वतमा तथा हिमालयभन्दा उत्तरतिर देवताहरूले भगवान् शङ्करको खोजी गरे ॥८–१२॥

---

१. ततः कश्मिंश्च कालान्ते इति न.सं.पु.पाठः।
२. प्रापयिष्यामो ह्यवश्यं तम् इति न.सं.पु.पाठः।
३. गच्छवध्वम् इति न.सं.पु.पाठः।

ते नालभन्त कुत्रापि[४] देवास्तमीशानं घटोद्भव। आययुर्हिमवन्तं ते मार्गयन्तो[५] दरीषु च ॥१३॥
ददर्श नारदो व्योम्नो मुञ्जवत्पर्वतोत्तमे ॥१४॥
नन्दिकेशं भ्रमाच्छ्रेष्ठमबुधच्च तमीश्वरम्। अब्रवीत्सहसा तेभ्यो दृष्टो रुद्रो मया विभो ॥१५॥
मुञ्जवच्छिखरे रम्ये प्रतिष्ठति मुदा विभुः। श्रुत्वा तद्वचनं देवा ब्रह्मादयः प्रहर्षिताः ॥१६॥
प्रययुस्तत्र यानैस्ते यत्र नन्दी स्थितो गिरौ। महेश्वरप्रतीकाशं ददृशुर्नन्दिनं सुराः ॥१७॥
त्रिलोचनं जटाशीर्षं शूलडमरुहस्तकम्। स नन्दी चागतान् देवान् ददर्श यानगान् मुदा ॥१८॥
उदतिष्ठत् स भूयो वै प्रेक्ष्य देवान्समागतान्। नन्दी प्रत्युद्ययौ तांश्च[६] यावत्ते तत्र नागताः ॥१९॥
प्रणनाम मुदा भक्त्या ब्रह्माणं विष्णुमव्ययम्। प्रवेश्य सत्कृतान्नन्दी यथायोग्यं समासने ॥२०॥
सम्पृच्छ्य कुशलं तेषां विरराम मुदान्वितः।

देवा ऊचुः

किं शिवेन शरीरेण चानेन नन्दिकेश्वर ॥२१॥
शश्वदुपप्लवैरार्ताः पराधीनाः सुरा वयम्[७]। क्लिश्यामहे वयं नाके यं विना सन्ततं शिवम् ॥२२॥
अन्वेषणाय तस्यैवमिहागता वयं द्विज। तदीश्वरस्य वृत्तान्तं वेत्ता त्वमेव निश्चितम् ॥२३॥
बुध्वेतीहागता नन्दिन् प्रकथ्यताञ्च नोऽधुना।

---

हे अगस्त्य मुनि ! देवताहरूले शङ्करलाई कतै पनि फेला पारेनन्। त्यसपछि उनीहरू उहाँलाई खोज्दै हिमालयको गुफातिर आए। मुञ्जवान् पर्वतमा रहेका नन्दिकेश्वरलाई नारदले आकाशबाट देखे र भ्रमवश यिनै ईश्वर हुन् भन्ने ठाने ॥१३-१४॥

हत्त न पत्त उनले भने – मैले भगवान् शिवलाई देखेँ, उहाँ मुञ्जवान् पर्वतको सुन्दर शिखरमा आनन्दसाथ बस्नुभएको छ। यो कुरा सुनेर ब्रह्मा आदि गरिएका देवताहरू जुन पहाडमा नन्दी बस्नुभएको थियो, त्यसै ठाउँमा गए। देवताहरूले तीन आँखा भएका, शिरमा जटाधारण गर्ने, त्रिशूल र डमरु हातमा लिएका, महेश्वरजस्ता नन्दीलाई देखे। ती नन्दीले यानमा चढेर आउन लागेका देवताहरूलाई देखे र ती देवताहरू देखेर खुसी हुँदै जुरुक्क उठे। उनीहरू त्यहाँ आइपुग्नुभन्दा पहिले नै नन्दी उठेर लिन गए। भक्तिपूर्वक अविनाशी विष्णु र ब्रह्माजीलाई प्रसन्न हुँदै उनले नमस्कार गरे ॥१५-१९॥

सत्कार गरेर उचित आसनमा राखिसकेपछि कुशल प्रश्न गरेर प्रसन्न भएका नन्दी चुप लागे। देवताहरूले भने – हे नन्दिकेश्वर ! तपाईंले यो शरीर किन लिनुभएको हो ? हे विभु ! निरन्तर उपद्रवले ग्रस्त र पराधीन यस्तो शिवजीको चोला तपाईंले किन लिनुभयो ? शिवजी नहुँदा हामीले ठूलो दुःख पाएका छौँ। हे ब्राह्मण ! उहाँलाई खोज्न यहाँ आएका हौँ। हे नन्दिकेश्वर ! उहाँका बारेमा तपाईंलाई अवश्य थाहा छ भन्ने ठानेर हामी यहाँ उहाँको खोजी गर्न आएका हौँ। हामीलाई उहाँको खबर बताउनुहोस् ॥२०-२३½॥

---

४. कुत्रापि नालभम् इति न.सं.पु.पाठः।
५. अन्वेषयन् इति न.सं.पु.पाठः।
६. प्रत्युद्ययौ तान्नन्दी च इति न.सं.पु.पाठः।
७. शश्वदुपप्लवार्त्तेन पराधीनेन नो विभो इति न.सं.पु.पाठः।

नन्दिकेश्वर उवाच

अत्रैव चाऽर्चितः स्थाणुर्यथाशक्त्या च भक्तितः ॥२४॥

तुष्टवान् भगवान् मह्यं दत्तवान् वरमीप्सितम्[८] । स्वकीयं विभुरेकांशं दत्त्वा मह्यं पुनस्तदा ॥२५॥

भविष्यं श्रावयन् भूयो भगवानमरोत्तमाः । देवा ह्यागत्य मद्धेतोरभिषेक्ष्यन्ति मङ्गलैः[९] ॥२६॥

भविष्यसि गणश्रेष्ठ इत्युक्त्वान्तर्दधे विभुः ।

धिषण उवाच

उपायं वच्म्यहं शक्र लभ्यते येन दर्शनम् । ईश्वरस्य सुरा अस्माभिः तच्छृणुत हि मद्वचः ॥२७॥

त्रैलोक्येषु च शैलेषु देशेषु सागरेषु च । अस्माभिर्न गतं यत्र तत्स्थानं नैव विद्यते ॥२८॥

खिन्नाः क्लिष्टा वयं द्रष्टुमसमर्थाश्च तं विदुः । तं द्रष्टुं वद कः शक्तो विष्णुं पितामहं विना ॥२९॥

इन्द्र उवाच

अहो ऋतं वचो देवा यदुक्तं गुरुणाऽधुना । पथ्यमेतद्वचो नो वै तद्दर्शनप्रसूचकम् ॥३०॥

विभो ब्रह्मन्नमस्तुभ्यं कार्यकारणसंविदे । नमस्ते भगवन्विष्णो सर्वकारणसंविदे ॥३१॥

धातः समाधिना चात्र द्रष्टव्यो भवता शिवः । यत्र तिष्ठति शंभुर्वै तत्स्थानमुच्यतां हि नः ॥३२॥

तस्माद्योगबलेनाशु प्रविलोक्य महीतलम् । प्रसाद्यतां विभोऽस्माकमधुना खिन्नमानसम् ॥३३॥

स्कन्द उवाच

तस्य तद्वचनं श्रुत्वा ब्रह्मा लोकपितामहः । दध्यौ समाधिना साक्षात्तेजोरूपं तमीश्वरम् ॥३४॥

स्थित्वा निश्चञ्चलं सम्यक् सुप्तमीनो यथा ह्रदः । अब्रवीदीदृशं वाक्यं ध्यात्वा योगेश्वरं तदा ॥३५॥

---

नन्दिकेश्वरले भन्नुभयो – मैले यस ठाउँमा शक्तिले सहित भएका महादेवको यथाशक्ति भक्तिपूर्वक पूजा गरेको थिएँ र प्रसन्न भएर मलाई उहाँले इच्छाअनुसारको वर दिनुभएको थियो । हे देवता हो ! उहाँले मलाई आफ्नो एक अंश दिनुभयो र त्यसपछि भविष्यको कुरा सुनाउनुभयो । हे नन्दिकेश्वर ! तिमीलाई देवताहरू आएर मङ्गलमय अभिषेक गर्नेछन् । इति भनेर भगवान् अन्तर्धान हुनुभयो ॥२४–२६½॥

बृहस्पतिले भन्नुभयो – हे इन्द्र ! जुन उपाय गर्दा हामीहरूले भगवान् शङ्करको दर्शन गर्न पाउँछौं, त्यही उपाय बताउँछु, सुन्नुहोस् । तीनै लोकमा पहाड, देश, समुद्रमा हामी गयौं, हामी नपुगेको भन्ने ठाउँ नै रहेन । हामीहरू थाक्यौं, ज्यादै दुःख पायौं, शङ्करलाई भेट्न सकेनौं, उहाँलाई देख्न विष्णु र ब्रह्माबाहेक अरू को नै समर्थ छन् र ? भन्नुहोस् ॥२७–२९॥

इन्द्रले भन्नुभयो – भर्खर बृहस्पतिले जे कुरा भन्नुभयो, त्यो भगवान् शिवलाई देखाउने खालको सही बाटो हो । हे विभो ! हे ब्रह्माजी ! सम्पूर्ण कार्यका कारण भएका हजुरलाई नमस्कार छ । यस्तै हे विष्णु ! हजुरलाई पनि नमस्कार छ । हे ब्रह्मन् ! समाधि लगाएर हजुरले शिवलाई पत्ता लगाउनुहोस् । जहाँ शिवजी बस्नुभएको छ, त्यो ठाउँ हामीलाई बताउनुहोस् । त्यसैले योगबलद्वारा संसारभरि तुरुन्त हेरेर शिवजी रहेको ठाउँ पत्ता लगाई दुःखी चित्त भएका हामीहरूलाई शान्त तुल्याउनुहोस् ॥३०–३३॥

कार्तिक स्वामीले भन्नुभयो – देवताहरूको यस्तो कुरा सुनेर लोकका पितामह ब्रह्माले साक्षात् तेजोरूप लिने शङ्करलाई पत्ता लगाउन समाधि लगाउनुभयो । पोखरीमा सुतेको माछोजस्तै निश्चल भएर भगवान् शङ्करको ध्यान गरेपछि ब्रह्माजीले भन्नुभयो ॥३४–३५॥

---

८. वरं दत्तं मदीप्सितम् इति न.सं.पु.पाठः ।

९. त्वाभिषेचन्ति मङ्गलै इति न.सं.पु.पाठः ।

ब्रह्मोवाच

अतो याम्यदिशि स्थाने योजनैकप्रमाणके। पादे हिमवतः पुण्ये रम्ये सिद्धाद्रिसंज्ञके ॥३६॥

श्लेष्मान्तकालये तत्र शङ्क्यते वर्तते शिवः[१०]। अधुना तत्र गन्तव्यं मधुजित्त्रिदिवेश्वराः ॥३७॥

स्कन्द उवाच

ब्रह्मणो वचनं श्रुत्वा हर्षप्रफुल्लमानसाः। वदन्तः साधु साध्विति बभूवुः सिद्धचारणाः ॥३८॥

ददृशुस्तद्वनं देवास्तस्मात् श्लेष्मान्तकं मिथः। अब्रुवन् वनमेतद् हि पुण्यं सत्यं न संशयः[११] ॥३९॥

किंशुकाशोकबकुलैः पुष्पितैः सुविराजितम्। मन्दारैर्विविधैः कुन्दैरर्जुनैरुपशोभितम् ॥४०॥

करवीरैः कदम्बाद्यैः सिन्दुवारैस्तथाऽपरैः। पुन्नागैर्जातिभिश्चान्यैर्नानाजातिसुगन्धिभिः ॥४१॥

सर्जबिल्वबकैर्जत्रैश्चूतचम्पकजम्बिरैः। दाडिमैर्बीजपूरैश्च कदलीपनसैर्बभौ ॥४२॥

द्रुमच्छायानिकुञ्जैश्च कुसुमैः सुमनोहरैः। लताभिः फुल्लपुष्पाभिर्विविधाभिर्विराजितम् ॥४३॥

जीवञ्जीवमयूरैश्च कूजद्भिश्चैव कोकिलैः। भ्रमद्भिश्च द्विरेफैश्च समन्तादुपशोभितम् ॥४४॥

चकोरै राजहंसैश्च खञ्जरीसारसैर्बभौ। वराहयूथसङ्क्रान्तैर्मृगयूथैश्च संयुतम् ॥४५॥

कपिशार्दूलगवयैर्व्याघ्रभूदारकैस्तथा। आकर्ण्य[१२] तद्वनं दिव्यं देवलोकमनोहरम् ॥४६॥

गन्तुं प्रचक्रिरे देवास्तद्दर्शनसमुत्सुकाः।

देवाश्च शम्भोर्वचनाद्धि भक्त्या तं नन्दिकेशं ह्यभिषिच्य तस्मात्।
तेनैव सार्द्धं प्रययुर्ध्रुवं ते तीरे मुदा वाक्प्रभवापगायाः ॥४७॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे श्लेष्मान्तकवनदर्शनं नामैकाशीतितमोऽध्यायः ॥८१॥

---

ब्रह्माले भन्नुभयो– हे विष्णु ! हे देवता हो ! यहाँबाट दक्षिणपट्टि एक योजन टाढा हिमालयको फेदीमा सिद्धाद्रि भन्ने पर्वत छ, त्यही श्लेष्मान्तक भन्ने ठाउँमा शङ्कर हुनुहुन्छ जस्तो मलाई लागेको छ। त्यसैले अब त्यहाँ हेर्न जाऔँ ॥३६–३७॥

कार्तिक स्वामीले भन्नुभयो – ब्रह्माजीबाट निस्किएको यो कुरा सुनेर सबैको मनमा हर्ष भयो भनेर ठीक हो, ठीक हो भन्दै सिद्ध र चारणले भने। त्यसपछि देवताहरूले गएर त्यो वन देखे, त्यसपछि उनीहरूले परस्परमा यो पुण्यवन यही नै हो, यही नै हो भन्न थाले। त्यो वन, चाँप, अशोक, वकुल, बकाइनो, कुन्द, खरी आदि वृक्षका फलफूलले सुशोभित थियो। करवीर, कदम्ब, सिन्दुवार, पुन्नाग, जाति र अरू पनि सुगन्धित फूलहरू त्यहाँ फुलेका थिए। सर्ज, बिल्व, बक, कूट, चूत, चम्पक, दाडिम, बिमिरो, केरा, कटहर आदि फलहरूले त्यो वन अत्यन्त सुशोभित थियो। त्यस झाडीमा रुखको छाया र सुगन्धित फूलहरू फुलेका लहराहरूले गर्दा त्यो वन अत्यन्त सुशोभित भएको थियो। च्याखुरो, मयूर कराइरहेका, कोइली र घुमिरहेका भ्रमराहरूले गर्दा त्यो वन चारैतिर सुशोभित भएको थियो। चखेवा, राजहंस, खञ्जरी, सारौँले गर्दा यो वन सुशोभित भएको थियो। त्यस्तै यो वन बँदेलका बथान, मृगका ताँतीहरूले युक्त भएको थियो। बाँदर, सिंह, बाघ, गौरीगाई र हुँडारले युक्त भएको देवताको लोकभन्दा पनि सुन्दर त्यस वनलई देखेर देवताहरू त्यहाँ जानका लागि उद्यत भए ॥३८–४६॥

देवताहरू पनि भक्तिपूर्वक शङ्करको निर्देशन अनुसार नन्दिकेश्वरलाई अभिषेक दिएर आनन्दित हुँदै उहाँलाई साथमा लिएर वाग्वतीको तीरमा गए ॥४७॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा श्लेष्मान्तक वनको दर्शननामक एकासियौँ अध्याय पूरा भयो।

---

१०. तत्र शङ्कितोऽस्मि महेश्वरम् इति न.सं.पु.पाठः।
११. एतदेव वनं पुण्यं सत्यं सत्यमिति ब्रुवन् इति न.सं.पु.पाठः।
१२. संप्रेक्ष्य इति न.सं.पु.पाठः।

# द्व्यशीतितमोऽध्यायः

## भगवतः पशुपतेर्मृगरूपलीला

### स्कन्द उवाच

एवं प्राप्ते नदीतीरे देवसैन्ये तदा पुरा। भूयस्ते ददृशुर्दिव्यं वाग्वत्या दक्षिणे कुले ॥१॥
कदलीवनसंच्छन्नं फुल्लपादपशोभितम्। वाग्वत्याः पुलिनं दिव्यं हंससारसशोभितम् ॥२॥
नानापुष्पसमाकीर्णं नदीस्वच्छार्णराजितम्। गन्धामोदनपुष्पाणां सौरभेण सुगन्धितम्[1] ॥३॥
मुक्ताचूर्णप्रकाशाभिर्बालुकाभिरितस्ततः। क्रीडन्तीं ददृशुर्देवाः कन्यां काञ्चिन्मनोरमाम् ॥४॥
निर्मलेन्दुप्रतीकाशतोयप्रवाहसंयुते। पुलिने वेदिकां स्वच्छैर्विनिर्मान्तीं सुबालुभिः ॥५॥
नीलाब्जपत्रनेत्रान्तां तन्वङ्गीं सुपयोधराम्। स्मिताननाञ्चन्द्रवक्त्रां सर्वचिह्नैश्च संयुताम् ॥६॥
विषमलोचनां दिव्यां बिम्बौष्ठीं सप्तवार्षिकीम्[2]। दिव्यवस्त्रपरीधानां सर्वाभरणभूषिताम् ॥७॥
कोटिकन्दर्पसौन्दर्यां कोटिसूर्यप्रभायुताम्। महातेजस्विनीं कन्यां कान्त्या जितत्रिपिष्टपाम्[3] ॥८॥
भ्राजमानां पुलिने तां मोहिनीञ्च मनोहराम्। एकाकिनीं समालोक्य ब्रह्मविष्णुपुरन्दराः ॥९॥
विस्मयं परमं जग्मुर्भृशं मोहवशङ्गताः। मुमुहुर्देवताः शेषाश्चात्यन्तं प्रेक्ष्य सुन्दरीम् ॥१०॥
हरिणीनयनां दिव्यां दृष्ट्वा चित्रार्पिता इव। प्रोवाच वचनं ब्रह्मा विष्णुशक्रप्रचोदितः ॥११॥
हृदि शङ्कां विधायैव रूपौदार्यगुणेन वै।

---

## अध्याय – ८२

### भगवान् पशुपतिको मृगरूप र लीला

कार्तिक स्वामीले भन्नुभयो – यसरी नदीको तीरमा पुगेका देवसेनाले दक्षिणपट्टिको तीरमा दिव्य शोभा देखे। त्यो वाग्मतीको दिव्य तीर केराका घारीहरूले ढाकिएको थियो, फुलेका रुखहरूले सुशोभित देखिन्थ्यो, त्यहाँ हाँस र सारौंका वथान शोभायमान थिए। विभिन्न किसिमका फूलहरूले ढाकिएको थियो, नदी स्वच्छ पानी पर्नाले गर्दा सुशोभित देखिन्थ्यो, सुगन्धित, आनन्द दिने फूलहरूमा मौरी, भ्रमरा आदिको गुञ्जन थियो ॥१–३॥

त्यही वाग्मतीका तटमा देवताहरूले मोतीको चूर्णजस्तो बालुवा लिएर खेलिरहेकी कुनै सुन्दरी कन्यालाई देखे। उनी निर्मल चन्द्रमा जस्तो स्वच्छ पानीको प्रवाहले युक्त भएको तटमा बालुवाको वेदी बनाइरहेकी थिइन्। उनका आँखाका छेउ नीलो कमलको पातजस्ता थिए, उनको शरीर पातलो थियो, सुन्दर स्तनहरू थिए, चन्द्रमाको जस्तो हँसिलो मुख थियो र उनी सम्पूर्ण लक्षणले युक्त भएकी थिइन्। तिनका तीनवटा आँखा थिए, गोलकाँक्रीजस्ता ओठ थिए, उनको उमेर सात वर्षको थियो। दिव्य वस्त्र पहिरिएकी थिइन्, सम्पूर्ण गहना लगाएकी थिइन्। करोडौं कामदेवको जस्तो उनको सौन्दर्य थियो, करोडौं सूर्यको जस्तो कान्ति थियो। अत्यन्त तेजले युक्त भएकी ती कन्याले देवलोकको कान्तिलाई नै जितेकी थिइन् ॥८॥ नदीको तटमा सबैलाई मुग्ध तुल्याउने एक्लै बसेकी ती कन्यालाई देखेर ब्रह्मा, विष्णु र इन्द्र अत्यन्त आश्चर्यमा परे र मोहित भए। देवताहरू पनि ती मृगनयनी दिव्य सुन्दरीलाई देखेर चित्रलिखित जस्ता भए। तिनको रूपसौन्दर्य एवं उदारता आदि गुणले गर्दा आश्चर्यमा परी यस्ती कन्या को होलिन् भनी शङ्का गर्दै गरेका बेला विष्णु र इन्द्रद्वारा अभिप्रेरित भई ब्रह्माजी भन्नलाग्नुभयो ॥९–११॥

---

१. वासितं मधुरादिभि इति न.सं.पु.पाठः। २. सप्तवार्षिकाम् इति न.सं.पु.पाठः।
३. देवलोकजितप्रभाम् इति न.सं.पु.पाठः।

ब्रह्मोवाच

एकाकिनी महारण्ये कथं तिष्ठसि कन्यके ॥१२॥
सर्वसौन्दर्यसंयुक्ता का त्वं वदाधुना च मे। रूपेण तेजसा चिह्नैः पार्वती त्वं भवेर्ध्रुवम् ॥१३॥
शुचिस्मिते त्वया भद्रे दृष्टोऽसौ भुवनेश्वरः। लोकानां नो विना शम्भुं न शोभाऽस्ति किलाम्बिके॥१४॥
शम्भुं लोकस्य भर्त्तारं न पश्यामो हरं शिवे। भुवनेषु च सर्वेषु पर्वतेषु दरीषु च ॥१५॥
मार्गमाणा हि तं क्लिष्टा द्रष्टुकामा इहागताः। अवश्यं विद्यते देवि त्वत्सन्निधौ वदेश्वरः ॥१६॥
भवानि यत्र तत्रार्य्ये स्यादीश्वरो न संशयः[४]।

देव्युवाच

अतो नैर्ऋत्यभागे च सर्वपुष्पोपशोभिते ॥१७॥
नानाद्रुमलताकीर्णे बहुमृगसमाजकम्। वाग्वत्याः पश्चिमे देशे विस्तीर्णे मृदुशाद्वले ॥१८॥
द्रक्ष्यसे तत्र तं धात[५]र्मृगरूपधरं हरम्।

स्कन्द उवाच

इत्युक्त्वा सहसा देवी तत्रैवान्तर्दधे भुवि ॥१९॥
ततोऽद्राक्षुः सुरास्तत्र विलं देवीनिमज्जकम्। तुष्टुवुश्च ततो देवास्त्रिविधाभिश्च भक्तिभिः[६] ॥२०॥
आधाय चाञ्जलिं मूर्ध्नि परिक्रम्य पुनः पुनः।

देवा ऊचुः

मातर्देवि नमस्तेऽस्तु भवान्यै सततं नमः ॥२१॥
अव्यक्तायै ह्यलक्ष्यायै व्यक्ताव्यक्तस्वरूपिणि। कात्यायन्यै कलाधात्र्यै ह्यम्बिकायै शिवे नमः ॥२२॥
मायायै गतमायायै मायामोहितशङ्करे। जगदैश्वर्यरूपायै जगन्मोहिनि ते नमः ॥२३॥
गुह्याख्यायै च रौद्रायै गुह्येश्वरि नमोऽस्तु ते। वरं देहि च नो मातर्येन द्रक्ष्यामहे विभुम् ॥२४॥

---

ब्रह्माजीले भन्नुभयो – हे कन्या ! यो ठूलो जङ्गलमा एक्लै तिमी कसरी बस्छ्यौ ? सम्पूर्ण सौन्दर्यले युक्त भएकी तिमी को हौ ? मलाई भन। रूप, तेज र लक्षण हेर्दा तिमी अवश्य पार्वती नै हुनुपर्छ। हे भद्रे तिमीले शिवजीलाई देखेकी छ्यौ कि ? भन। हे अम्बिके ! संसार शिवजीविना कुनै शोभा पाउँदैन। हे शिवे ! लोकका पालक शिवजीलाई हामीले देख्न पाएनौं। चौधै भुवन, सबै पर्वत र गुफाहरूमा हामीले खोज्दाखोज्दै ज्यादै दुःख पायौं, यहाँ हुनुहुन्छ कि भनेर खोज्दै आएका हौं। हे आर्ये ! जहाँ पार्वती रहनुहुन्छ, त्यहाँ अवश्य ईश्वर पनि बस्नुहुन्छ, यसमा शङ्का छैन। त्यसैले हे देवी ! ईश्वर तपाईंको नजिकै अवश्य हुनुहुन्छ ॥१२–१६½॥

देवीले भन्नुभयो – यस ठाउँबाट नैर्ऋत्यपट्टि सम्पूर्ण फूलहरूले सुशोभित भएको, विभिन्न रुख र लहराले ढाकिएको वाग्वतीको पश्चिमपट्टि घाँस भएको विशाल क्षेत्रमा मृगको वथान छ। त्यसै वथानमा मृगको रूप धारण गरेर भगवान् शम्भु रहनुभएको छ। हे ब्रह्मा ! त्यहाँ गएर उहाँलाई देख्न सक्नुहुनेछ ॥१७–१८½॥

कार्तिक स्वामीले भन्नुभयो – इति भनेर अचानक भगवती त्यसै ठाउँमा अन्तर्धान हुनुभयो। त्यसपछि देवताहरूले देवी अन्तर्धान भएको छिद्र देखे। त्यसपछि देवताहरूले तीनै किसिमका भक्तिद्वारा अँजुलि शिरमा राखेर परिक्रमा गर्दै ती देवीको बारम्बार स्तुति गरे ॥१९–२०½॥

देवताहरूले भने – हे भवानी ! हे आमा ! हे देवी ! हजुरलाई बारम्बार नमस्कार छ। अव्यक्त तथा अलक्ष्य भईकन पनि व्यक्त तथा अव्यक्त रूप लिने कात्यायनी, कालधात्री र अम्बिकालाई नमस्कार छ। हे जगन्मोहिनी ! मायारूप लिने, मायाबाट मुक्त, मायाले भगवान् शङ्करलाई समेत मोहित तुल्याउने संसारको ऐश्वर्यरूपा हजुरलाई नमस्कार छ। गुह्यनाम गरेकी रौद्ररूप लिने हे गुह्येश्वरी ! हजुरलाई नमस्कार छ। हे आमा ! हामीलाई वर दिनुहोस्, जुन वरले गर्दा हामी प्रभुलाई देख्न सकौं ॥२१–२४॥

---

४. भवेश्वरो संशय इति न.सं.पु.पाठः।
५. धातो इति न.सं.पु.पाठः।
६. देवास्तस्यै च त्रिविधैस्तदा इति न.सं.पु.पाठः।

स्कन्द उवाच

स्तुत्वैवं विबुधास्तां वै स्मृत्वा तद् वचनं[७] पुनः । ततः पदातयो[८] भूत्वा विविशुस्तद्वनं महत् ॥२५॥
अन्वेषयन्तो देवास्ते[९] पशुरूपधरं हरम् । शनैः शनैश्च कुञ्जेषु कन्दरासु गुहासु च ॥२६॥
मृगकूटं स्थलं पश्चादारुरुहुः सुरास्ततः । किरातेशश्च यत्राऽऽस्ते श्रमक्लिष्टाः स्थिताः क्षणम् ॥२७॥
ददृशुस्ते महारण्यं मृगस्थलीसमुद्भवम् । नानापुष्पसमाकीर्णं जग्मुस्तत्र वनं पुनः ॥२८॥
ततस्तदुच्चशैलेन्द्रमागत्य विबुधेश्वराः । अधोऽवलोक्य ते देवा अद्राक्षुस्तं मृगोत्तमम् ॥२९॥
शिलातले सुखासीनो मृगैश्च परिवारितः[१०] । सर्वभूधरमध्यस्थः[११] काञ्चनाद्रिर्यथा बभौ ॥३०॥
तिष्ठन्तं मृगयूथस्य मध्ये गुप्तं मृगोत्तमम्[१२] । एकशृङ्गं तथैकाङ्घ्रिं तप्तहाटकवर्चसम् ॥३१॥
चारुवक्त्राक्षिदशनं श्वेतग्रीवोदरोत्तमम् । सितबिन्द्वञ्चिते पृष्ठे नानाचिह्नैर्विराजितम् ॥३२॥
पीनोन्नतकटिस्कन्धं निमग्नाग्रशिरोधरम् । बिम्बोष्ठं ताम्रजिह्वास्यं दंष्ट्राङ्कुरविराजितम् ॥३३॥
सर्वावयवशोभाढ्यं चित्ररोमविराजितम् । प्रणम्य दण्डवद्देवा शनैर्हृदाऽपठन् स्तवम् ॥३४॥
ॐ नमः शिवाय रुद्राय पशूनां पतये नमः । पशुरूपाय शर्वाय पशुपाय नमो नमः ॥३५॥
नमामश्चरणं तेऽद्धा व्रजामः शरणं हि ते । रक्ष पाहि विभो नस्त्वं त्वच्छरणागतान् हर ॥३६॥
ततस्ते विबुधाः सर्वे शिखरात् सम्प्रधाविताः । जिघृक्षया तीव्रया[१३] तमरुन्धन् सर्वतो दिशः ॥३७॥

---

कार्तिक स्वामीले भन्नुभयो– यसरी देवताहरूले उनको स्तुति गरे । त्यसपछि देवीले भनेको वचनलाई सम्झिएर उनले बताएको बाटको अनुसरण गर्दै देवताहरू त्यो ठूलो वनमा प्रवेश गरे। त्यसपछि देवताहरू मृगको रूप धारण गर्ने भगवान् शङ्करको खोजी गर्दै विस्तारै–विस्तारै झाडी, गुफा, ओडार हुँदै मृगकूट नाम गरेको पर्वतमा चढे। जहाँ किरातेश्वर भगवान् हुनुहुन्थ्यो, त्यसै ठाउँमा थकाइ मार्न देवताहरू एकछिन बसे । तिनीहरूले त्यहाँ मृगहरूको वासस्थान भएको ठूलो जङ्गल देखे । त्यो जङ्गल विभिन्न किसिमका फूलले भरिएको थियो । उनीहरू त्यहाँ गए । त्यसपछि ती देवताहरूले त्यस पर्वतमा पुगेर तलतिर हेर्दा त्यस मृगलाई देखे ॥२५–२९॥

जसरी सम्पूर्ण पहाडहरूको बीचमा सुमेरु पर्वत सुशोभित हुन्छ, त्यसरी नै विभिन्न मृगहरूले घेरिएर आनन्दसित ढुङ्गामाथि बसेको मृग सुशोभित भएको थियो। मृगको वथानको बीचमा चारैतिरबाट लुकेर बस्ने त्यस मृगका एउटा सिङ र एउटा खुट्टा उजिल्याएको सुनको जस्तो तेजिलो थियो। मुख, आँखा र दाँत अत्यन्त सुन्दर थिए। घाँटी र पेट सेतो थियो, पिठ्यूँमा सेता थोप्लाहरू थिए, विभिन्न लक्षणले युक्त भएको त्यो मृग थियो । कम्मर र काँध मोटो र केही उठेको थियो, टाउकाको भाग केही झुकेको थियो, गोलकाँक्रीका जस्ता ओठ थिए, तामाको जस्तो रातो जिब्रो भएको मुख थियो, दाँतका टुसाले गर्दा त्यो अत्यन्तै सुहाएको थियो। छिरबिरे रौं भएको, सम्पूर्ण अवयवको शोभाले युक्त त्यस मृगलाई देवताहरूले दण्डवत् गर्दै ढोगेर स्तुति गर्न थाले ॥३०–३४॥

शिव, रुद्र र पशुका पतिलाई नमस्कार छ। पशुको रूप लिने पशुका रक्षक शर्वलाई नमस्कार छ। हे शम्भु ! हामी हजुरको चरणमा छौं, शरण लिन आएका छौं। हे प्रभु ! हजुरको शरणमा आउने हाम्रो रक्षा गर्नुहोस्, रक्षा गर्नुहोस्। त्यसपछि सबै देवताहरू सबै दिशाबाट मृगलाई छेकारो मार्दै समात्नका लागि पर्वतको शिखरबाट हाम फाले ॥३५–३७॥

---

७. तद्वच इति न.सं.पु.पाठः ।
८. पदातिनो इति न.सं.पु.पाठः ।
९. अन्वेषयन् सुरास्तत्र इति न.सं.पु.पाठः ।
१०. सुखासीनं मृगैश्च परिवारितम् इति न.सं.पु.पाठः ।
११. सर्वभूधरमध्यस्थम् इति न.सं.पु.पाठः ।
१२. तिष्ठतो मृगयूथस्य मध्ये गुप्तस्य सर्वत इति न.सं.पु.पाठः ।
१३. गृहीतुम् इति न.सं.पु.पाठः ।

ततो नम्रतया शीघ्रमलक्ष्या इव निःसृताः। जगृहुः सहसा शृङ्गं ब्रह्मविष्णुपुरन्दराः॥३८॥
शृङ्गाग्रं प्रथमं गत्वा गृहीतं वज्रपाणिना। मध्यं धात्रा ततस्तस्य गृहीतं प्रणतेन च॥३९॥
जग्राह केशवश्चापि मूलं तस्य मृगात्मनः। त्रिभिरेव गृहीतं तद् बभञ्जुस्ते त्रिधा तदा[१४]॥४०॥
त्रिखण्डं पतितं शृङ्गं त्यक्त्वा तेषां करेषु सः। उदयौ सहसाकाशं भगवान् हरिणेश्वरः॥४१॥
तस्मिन्काले सुरास्तत्र विषण्णवदना मुने। अन्तर्हिते गते भूमन् वक्त्रं प्रेक्ष्य मिथो हरेः॥४२॥
ततो गगनमुत्प्रेक्ष्य समुच्छ्वस्य मुहुर्मुहुः। शिरस्यञ्जलिमाधाय त्रिदशास्तुष्टवुस्तदा॥४३॥
देवा ऊचुः
ॐ नमः शिवाय शर्वाय सर्वेषां पतये नमः। नमो रौद्राय रुद्राय रौद्राणां पतये नमः॥४४॥
महादेवाय देवाय देवानां पतये नमः। तेजोरूपाय लक्ष्याय तेजसां पतये नमः॥४५॥
व्यक्ताव्यक्तस्वरूपाय नमो व्यक्तिविभूतये[१५]। प्रपञ्चरूपिणेऽजाय प्रपञ्चागोचराय च॥४६॥
विश्वरूपाय विश्वाय विश्वेषां पतये नमः। पराय परमेशाय परातीताय वै नमः॥४७॥
परापराय पालाय पार्वतीवल्लभाय च। हराय हरिणेशाय हरिणाङ्गधृते नमः॥४८॥
मृगरूपाय मान्याय व्योमस्थाय नमो नमः। नमोऽस्तु चैकशृङ्गाय त्रिनेत्राय नमो नमः॥४९॥
नमोऽस्तु चैकपादाय दंष्ट्राविभूषिताय च। पशुरूपाय भव्याय पशुपाशविनाशिने॥५०॥

---

अनि अत्यन्त नुघेर नदेखिने जस्तो गरी (लुकेर) ब्रह्मा, विष्णु र इन्द्र निस्किए र हत्त पत्त त्यस मृगको सिङ समाते॥३८॥ सर्वप्रथम इन्द्रले गएर सिङको टुप्पो समाते। त्यसपछि ब्रह्माले झुकेर गई मध्यभाग समात्नुभयो। भगवान् विष्णुले मृगस्वरूप शिवका सिङको फेद समात्नुभयो। यसरी तीनै जनाबाट समातिएको त्यो सिङ तीन टुक्रा भएर भाँचियो॥३८-४०॥

तीन खण्डमा भाँचिएको त्यस सिङलाई तिनीहरूको हातमा छोडेर मृगरूपधारी भगवान् शङ्कर अचानक आकाशमा उड्नुभयो। त्यस समयमा भगवान्को अन्तर्धान भएपछि देवताहरूको अनुहार अत्यन्त मलिन भयो। परस्पर उनीहरू आफ्नो र भगवान् विष्णुको मुख हेर्न थाले। त्यसपछि देवताहरूले बारम्बार लामो सास फेर्दै आकाशतिर हेरेर शिरमा अँजुली जोडी स्तुति गर्न थाले॥४१-४३॥

देवताहरूले भने – सम्पूर्ण प्राणीका अधिपति कल्याणकारी शिवजीलाई नमस्कार छ, रौद्रलाई नमस्कार छ। रौद्ररूप लिनेहरूका पनि मालिक रुद्रलाई नमस्कार छ। देवताका मालिक महादेवलाई नमस्कार छ। तेजोरूप लिने, लक्ष्यस्वरूप भएका तेजका पतिलाई नमस्कार छ। व्यक्त र अव्यक्त स्वरूप भएका, व्यक्त विभूतिको रूप लिने प्रपञ्चस्वरूप, अजन्मा प्रपञ्चबाट पनि अज्ञेय भगवान्लाई नमस्कार छ। परस्वरूप भएका, परबाट पनि प्राप्त गर्न नसकिने परमेश्वरलाई नमस्कार छ। पर, अपर, पाल स्वरूप भएका पार्वतीका पतिलाई नमस्कार छ। हरिणको अवतार लिने हरिणका मालिक भगवान् शङ्करलाई नमस्कार छ॥४४-४८॥

पूजनीय मृगरूप लिने आकाशवर्ती भगवान्लाई बारम्बार नमस्कार छ। एक सिङ लिने भगवान्लाई नमस्कार छ। तीन आँखा भएका भगवान्लाई बारम्बार नमस्कार छ॥४९॥ एउटा पाउ भएका, दाँतले सुशोभित, कल्याणकारी, पशुलाई बन्धनबाट मुक्त गर्ने पशुरूप शङ्करलाई नमस्कार छ॥५०॥

---

१४. त्रिधा कृत्वा बभञ्ज हि इति न.सं.पु.पाठः। १५. व्यक्तविभूतिने इति न.सं.पु.पाठः।

पशुभिः क्रीडते तस्मै[१६] पशूनां पतये नमः। पशुदेहं समाश्रित्य प्रमथैः पावने वने ॥५१॥
स्वेच्छसञ्चरणायेश पशुरूप नमोऽस्तु ते। लोकनिर्वाणबीजाय चैकरूपविधारिणे ॥५२॥
वरदानैकदक्षाय स्थित्युपकारिणे नमः। त्रात्रे नित्यं च भक्तानां[१७] पशुपते नमोऽस्तु ते ॥५३॥
व्यक्तो भव महेशान व्यक्तो भवात्र चाम्बरात्। शरणञ्च प्रपन्नेभ्यो[१८] दीयतां दर्शनं विभो ॥५४॥

स्कन्द उवाच

एवं स्तुत्वाऽमरास्तस्मै मृगरूपाय शम्भवे। व्योमस्थाय ह्यलक्ष्याय नमश्चक्रुर्मुहुर्मुहुः[१९] ॥५५॥
नामभिर्विविधैः पुण्यैः स्तुत्वा त्रिभुवनेश्वरम्। प्रणेमुश्च सुराः शेषा दण्डवत् पतिता भुवि ![२०] ॥५६॥
तद् व्योम्नि तेजः प्रतिबिम्बरूपं ते चोद्गतास्या ददृशुस्तदा तत्[२१]।
नीहारसंच्छादितव्योम्नि संस्थितं[२२] मार्त्तण्डबिम्बञ्च यथा हि लोकाः ॥५७॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे पशुक्रीडने शृङ्गग्रहणं नाम त्र्यशीतितमोऽध्यायः ॥८३॥

---

पशुहरूका साथ खेल्ने पशुका पतिलाई नमस्कार छ। पशुको शरीर लिएर पवित्र वनमा प्रथम गणहरूका साथ स्वेच्छापूर्वक हिँड्ने हे पशुरूप शङ्कर ! हजुरलाई नमस्कार छ। संसारको मुक्तिका बीज भएका, वरदान दिन सिपालु, प्राणीहरूको उपकार गर्ने ब्रह्मस्वरूपलाई नमस्कार छ। भक्तहरूको रक्षा गर्ने हे पशुपति ! हजुरलाई नमस्कार छ। हे महादेव ! प्रकट हुनुहोस्, आकाशबाट प्रकट हुनुहोस्। हे प्रभु ! शरणमा परेका हामीहरूलाई दर्शन दिनुहोस् ॥५१-५४॥

कार्तिक स्वामीले भन्नुभयो - यसरी आकाशमा अलक्ष्य भएका मृगरूपधारी ती शम्भुको देवताहरूले स्तुति गरेर बारम्बार नमस्कार गरे। विभिन्न किसिमका पुण्यदायी नामहरूको उच्चारण गर्दै बाँकी देवताहरूले भगवान् शङ्करलाई शरीर झुकाएर दण्डवत् प्रणाम गरे ॥५५-५६॥

कुहिरोबाट निस्किएको घामलाई प्राणीहरूले देखेजस्तै त्यसबेला ठाडो मुख लगाएका देवताहरूले आकाशमा तेजको प्रतिबिम्ब निस्केको देखे ॥५७॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा शिवकृत पशुक्रीडामा इन्द्र आदि तीनजनाद्वारा मृगरूप पशुपतिको शृङ्गग्रहणनामक बयासियौं अध्याय पूरा भयो।

---

१६. पशुभिः क्रीड्यमानाय इति न.सं.पु.पाठः।
१७. त्रात्रे च भक्तिनां नित्यम् इति न.सं.पु.पाठः।
१८. शरणञ्च प्रपन्नानाम् इति न.सं.पु.पाठः।
१९. प्रणमंस्तं मुहुर्मुहु इति न.सं.पु.पाठः।
२०. दण्डपत्पातयँस्तनुम् इति न.सं.पु.पाठः।
२१. तम् इति न.सं.पु.पाठः।
२२. नीहारसंच्छाद्य विहायसि स्थितम् इति न.सं.पु.पाठः।

# त्र्यशीतितमोऽध्यायः

## दिव्यशिवसहस्रनाम

नमः शिवशक्तिभ्याम्

कुमार उवाच

घटोद्भव सुराः सर्वे मिलित्वा वाग्वतीतटे। कुबेरशिवसंवादं नाममालासमन्वितम् ॥
जगुः प्रीतिपराः सन्तः शङ्करे लोकशङ्करे। तमेव श्रावयिष्यामि शृणु त्वं श्रद्धया मुदा ॥
कदाचित्तु महादेवो जगाम परमेश्वरः। अन्वितः कार्त्तिकेयेन रम्यं विन्दुसरोवरम् ॥१॥
नवरत्नशिलावृन्दं वनराजिविराजितम्। लहरीचित्रसोपानं चलज्जलविहङ्गमम् ॥२॥
स्वर्णपद्मरसोन्मत्तभङ्कारितमधुव्रतम्। क्षीरसागरगम्भीरं प्रतिबिम्बमिवोज्ज्वलम् ॥३॥
तत्र रम्यविहारेषु विजहार महेश्वरः। वनद्रुमैर्गलत्पुष्पैरर्चितो विबुधैरिव ॥४॥
निविश्य तस्य रम्याणि रत्नवन्ति स्थलानि च। उपविष्टः समाश्रित्य सन्तानवनमण्डले ॥५॥
गुहोपरचिते तस्मिन् सुखासीने समाययुः। सहिता राजराजेन योगिनः सनकादयः ॥६॥
प्रणम्य गिरिशं सर्वे लुठन्तोऽवनिमण्डले। आनर्चुर्मानसैर्वाक्यैरमलैः कमलैरिव ॥७॥
निश्चलेषूपविष्टेषु तेषु योगिषु शङ्करम्। व्याजहारेति सन्देशं कुबेरो योगिसत्तमम् ॥८॥

---

## अध्याय – ८३

### दिव्य शिवसहस्रनामको निरूपण

स्वामी कार्तिकेयले भन्नुभयो– हे अगस्त्य ! वत्ययसबेला सबै देवताहरूले वाग्वतीनदीका तीरमा गएर शिवसहस्रनामले समन्वित शिवर कुबेरको संवादलाई लोकशङ्कर शङ्करमा प्रीति गर्दै गायन गरे। अहिले म तपाईंलाई त्यही संवाद सुनाउनेछु, श्रद्धापूर्वक आनन्दले सुन्नुहोस् ॥

कुनै समयमा स्वामी कार्तिकेयका साथ परमेश्वर महादेव रमणीय विन्दुसरोवरमा जानुभयो। वनपङ्क्तिले सुशोभित विन्दुसरोवर चारैतिरका पर्खाल र सिंढीहरूमा नवरत्नका शिलाहरू जडान गरिएका थिए। जलपक्षीको विहारभूमि विन्दुसरोवरका सोपानहरू नवरत्नमय हुनाले सरोवरका तरङ्ग ठोक्किदा ती सोपानहरू रङ्गी विरङ्गी बन्दथे। बिन्दुसरोवर सुवर्णमय कमलको रसपान गरी मातेका भमराहरूको भङ्कारद्धारा भङ्कृत भएको थियो, त्यो क्षीरसागरसमान गहिरो थियो र सूर्यको प्रतिबिम्बसमान उज्ज्वल थियो। त्यस सरोवरका रमणीय विहारस्थलहरूमा भगवान् शिव विहार गर्न लाग्नुभयो। त्यस अवसरमा वन्यवृक्षहरूले आफ्ना पुष्पहरू खसाएर देवताहरूलेझैं उहाँको वन्दना गरे ॥१–४॥

विन्दुसरोवर वरिपरि रहेका रत्नमय रमणीय ठाउँहरूमा प्रवेश गरेर कुमारद्धारा तयार गरिएको सन्तान वनमण्डलको आश्रय लिएर भगवान् शिव सुखपूर्वक विराजमान हुनुभएपछि कुबेरका साथ सनक आदि योगीहरू त्यहाँ आइपुगे ॥५–६॥

भुईंमा दण्डवत् लम्पसार परेका सनक आदि योगीहरूले भगवान् शिवलाई प्रणाम गरी कमलझैं निर्मल मानस वाक्यहरूद्धारा उहाँको पूजा गरे। सबै ती योगीहरू निश्चल एवं शान्त भई आ–आफ्ना आसनमा बसेपछि राजराज कुवेर उत्तम योगी भगवान् शङ्करलाई आफ्ना प्रार्थनामूलक भावना व्यक्त गर्दै भन्न लागे ॥७–८॥

कुबेर उवाच

देवदेव महादेव महापुरुषसत्तम। अणिमादिगुणैश्वर्य ज्ञानविज्ञानसागर ॥९॥
यदि मां सर्वदा शम्भो स्कन्दादन्यं न मन्यसे। मयि कारुण्यभावेन यत्पृच्छामि तदुच्यातम् ॥१०॥
त्वत्प्रसादोपपन्नेन राज्येन परमेश्वर। रजसा श्रीमदान्धोऽहं त्वां न जानामि तत्त्वतः ॥११॥
को भवान् किमिदं सर्वं जगदेतच्चराचरम्। कथ्यतामिति मे येन प्रक्षरेदसती मतिः ॥१२॥
प्रकाशय त्वमात्मानं परं सच्चित्सुखात्मकम्। यैर्नामभिरुपास्योऽसि निश्चितानि वद प्रभो ॥१३॥
योगिनोऽथ कुबेरञ्च साधु पृष्टमिति त्वया। वाग्भिरभ्यर्चयामासुर्वक्ष्यामोऽद्य हि शाम्भवम् ॥१४॥

श्रीशिव उवाच –

एतद् गुह्यमनाख्येयं सर्वस्वं योगचक्षुषाम्। तथापि कथयिष्यामि सत्त्वावस्थो हि वै सखे ॥१५॥
कुशलोऽसि शृणुष्वेदं पुरा पुष्टं पुरातनैः। प्रपञ्चव्यक्तमात्मानं दर्शयिष्यामि तत्त्वतः ॥१६॥
एक एव महात्माऽहं सच्चिदानन्दविग्रहः। स्फुरामि परितः सर्वैर्ज्योतिषामाश्रयः परम् ॥१७॥

---

कुबेर भन्दछन्– हे देवदेव ! हे महादेव ! हे सर्वोत्तम महापुरुष ! हे ज्ञानविज्ञानका सागर ! हे शम्भु ! यदि हजुरले ममाथि करुणा गरी मलाई आफ्ना प्यारा छोरा स्कन्दभन्दा परको मान्नुहुन्न भने मैले जुन प्रश्न गर्दछु त्यसको उत्तर मलाई दिनुहोस्। हे परमेश्वर ! हजुरको कृपाप्रसादबाट मैले अलकाराज्य प्राप्त गरें, तर त्यस राज्यप्राप्तिबाट रजोगुणको वृद्धि हुन जाँदा धनसम्पत्तिको अभिमानमा डुबें र अन्धो भएँ। त्यसैले हजुरको वास्तविक तथ्यबोध गर्न असमर्थ भएँ ॥९–११॥

हे प्रभु ! हजुर को हुनुहुन्छ ? यो सम्पूर्ण चराचरात्मक जगत् के हो ? मलाई राम्ररी उपदेश गरी सम्झाउनुहोस् त्यसबाट हजुरको उपदेशबाट मेरो असद् बुद्धि समाप्त हुन सकोस्। हे शम्भु ! हजुरले हामीहरूका सामु आफ्नो सच्चिदानन्दघन आत्मालाई प्रकाशित गर्नुहोस् र हजुर जुन जुन नामको पाठ, जप वा सङ्कीर्तन गरी उपासनायोग्य हुनुहुन्छ ती अमोघ मानिएका नामहरू बताउनुहोस्। यसरी कुबेरले प्रार्थनाको स्वरमा प्रश्न गरेपछि सनक आदि योगीहरूले कुबेरलाई तपाईंले भगवान्‌का सामु राम्रो प्रश्न गर्नुभयो भनी वाणीद्वारा स्तुति गरे। त्यसबेला भगवान् शङ्करले ती सबैलाई जुन नाम बताउनुभयो ती शाङ्करतेजले सम्पन्न नाम हामी बताउँछौं ॥१२–१४॥

श्रीशिवले भन्नुभयो– हे मेरा मित्र कुबेर ! योगका आँखाद्वारा नजर गर्ने योगीहरूका लागि सर्वस्व तर सामान्य मानिसका सामु भन्न नहुने र अत्यन्त गोपनीय मेरो नामतत्त्व रहेको छ। तपाईं अहिले सत्त्वगुणलाई अँगालेर रहनुभएकाले मैले तपाईंका सामु नाममालाको उपदेश गर्नेछु। हे राजराज ! तपाईं कुशल पुरुष हुनुहुन्छ। तपाईंले गर्नुभएको प्रश्न पहिले प्राचीन आचार्यहरूले पनि गरेका थिए। अहिले म तपाईंको प्रार्थनाअनुसार मैले प्रपञ्चमा व्यक्त भएको आत्मतत्त्वलाई यथार्थरूपमा देखाउनेछु ॥१५–१७॥

विनोदयितुमिच्छन्ती सा शक्तिः परमा मम। सृष्टिस्थितिविनाशेषु चित्ताख्या सा गुणत्रयी ॥१८॥
अज्ञानपरमाणूनां परितः स्फुरतां सताम्। व्रजत्याधारभावं सा प्रकृतिस्त्रिगुणात्मिका ॥१९॥
रजः सत्त्वं तमस्तेषु विकारास्ते त्रयो गुणाः। सत्त्वाद्रजो रजः सत्त्वात्तमस्तेभ्योऽभवज्जगत् ॥२०॥
विष्णुं सत्त्वमयं राजन् राजसं चतुराननन्। तामसं रुद्रमित्येभिः सृजत्यवति हन्ति च ॥२१॥
एवं प्रपञ्चविस्तारं शाक्तं विद्धि धनेश्वरः। केवलं मद्विनोदार्थं निर्मितं मम मायया ॥२२॥
इन्द्रजालमिवाशेषं त्रैलोक्यं सचराचरम्। न स्फुरत्यतिमूढानां मृगतृष्णाजलोपमम् ॥२३॥
कर्ममूलमिदं सर्वं शब्दब्रह्मगुणात्मकम्। असद्विद्धि महाभाग भ्रान्त्या सदिव लक्ष्यते ॥२४॥
शब्दब्रह्माभिधानेन विन्दन्ति परमं शिवम्। स्फुरन्तमिव वार्षिक्याद् घनादिव दिवाकरम् ॥२५॥
बहिः कर्मजडे मार्गे मायया मम योजिताः। अभिभूताः प्रपञ्चेन ब्रह्माद्या न विदन्ति माम् ॥२६॥
आत्मा यः सर्वभूतानामवेद्यो ज्ञानिनामपि। स्वात्मावबोधविमलसान्द्रानन्दसुखोदयः ॥२७॥

---

हे राजराज ! म सच्चिदानन्दस्वरूप एउटै आत्मा हुँ तर सब ज्योतिस्तत्त्वको आश्रय बनेर आफूलाई अनेक तुल्याई ती अनेकका साथ प्रपञ्चमा व्यक्त हुने गर्दछु। मेरी अनादिसङ्गिनी परमाशक्तिले मलाई सृष्टि, स्थिति र विनाशमय प्रपञ्चमा विनोद गराउन चाहन्छिन्। चित्तमा प्रतिबिम्बित हुने वा चित्तरूपा त्रिगुणात्मक प्रकृति चारैतिर फैलिएर रहेका अज्ञानका परमाणुहरूका लागि टेक्ने पूर्वाधार बन्दछिन्। यी त्रिगुणात्मक प्रकृतिका तीन गुण सत्त्व, रज र तम हुन्। अज्ञानका विकार ती तीन गुण नै हुन्। सत्त्वगुणबाट रजोगुण, सत्त्वगुण र रजोगुणबाट तमोगुण पैदा हुन्छन्। यी तीन गुणबाट जगत् प्रपञ्चको उत्पत्ति हुन्छ। सत्त्वगुणका स्वामी विष्णु, रजोगुणका स्वामी ब्रह्माजी र तमोगुणको स्वामी म रुद्र हुँ। त्रिगुणात्मिका प्रकृतिले ब्रह्मा, विष्णु र रुद्रद्वारा जगत्को सृष्टि, पालन र संहार गराउँछिन्। हे धनेश्वर कुबेरजी ! यस किसिमको जुन जगत्प्रपञ्चको विस्तार भएको छ, त्यो शक्तिजन्य हो। वास्तवमा भगवती महामायाले मेरै विनोदका लागि यो जगत्प्रपञ्च खडा गर्नुभएको हो ॥१८–२२॥

इन्द्रजाल (जादू) जस्तै महामायाद्वारा तयार गरिएको यो सम्पूर्ण त्रिलोकीमा वर्तमान चराचर अत्यन्त मूढ हृदयका मानिसहरूको बुद्धिमा मृगमरीचिको जल समान असत्य हो भन्ने कुरा फुर्दैन। यो सम्पूर्ण प्रपञ्जजाल प्राणीहरूको कर्ममा आधारित र कर्मका फल भोगाउन तयार गरिएको हो। शब्दब्रह्मको विवर्तको विवर्त र त्रिगुणमा आधारित यो प्रपञ्च वास्तवमा असत् छ। हे सौभाग्यशाली ! हे कुवेरजी ! भ्रमका कारण मानिसका हृदयमा सत्यझैं प्रतीत हुन्छ ॥२३–२४॥

म परम शिवलाई योगी र ज्ञानीहरू वर्षाकालीन बादल फटाएर उदाएको सूर्यको दर्शन गरेझैं शब्दब्रह्मका रूपमा मेरो दर्शन गर्दछन्। मेरी मायाद्वारा कर्मले जड बनेको संसारको मार्गमा खटिएका र तेरो, मेरो, तँ र म भन्ने अज्ञानका साथ आवागमनको चक्रमा रिँगिरहेका प्राणीहरूको के कुरा ? ब्रह्मा आदि देवता समेतले मलाई राम्ररी जान्न सक्दैनन्। जो सबै प्राणीहरूको आत्मा हो, जसलाई ज्ञानीहरू पनि जान्न सक्दैनन्, त्यस्तो म शिव आत्मज्ञानद्वारा प्राप्त हुने निर्मल एवं प्रगाढ आनन्द एवं सुखको उदयका कारण आत्मानन्दी एवं आत्मसुखी भई रहने गर्दछु ॥२५–२७॥

तत्परं ब्रह्म विख्यातमवाच्यं वचसामपि। परं धाम परं सत्यं परं ज्योतिः सनातनम् ॥२८॥
परमात्मा शिवः सोऽहं दृश्योऽध्यात्मनि योगिभिः। अद्वैतज्ञानविज्ञानादरण्या इव पावकः ॥२९॥
ज्ञानेनोपाधिसङ्कल्पनिवृत्तेन शनैः शनैः। भावयन् मामनाकारं नैष्कर्म्येणेति देहिनाम् ॥३०॥
त्रिभिर्द्वन्द्वैर्विनिर्मुक्तः पुण्याद्यैर्बन्धहेतुभिः। अविद्यार्णवमुत्तीर्य परां निर्वृतिमाप्नुयात् ॥३१॥
उपाधिमतभेदेन ज्ञानिनः सबलात्मनः। स्फुरेयमात्मगूढोऽहं निर्मलस्फटिकोपमः ॥३२॥
सर्वभूतेषु चात्माहं सर्वभूतानि चात्मनि। यदा पश्यति विज्ञानमैश्वर्यं जृम्भये स्वयम् ॥३३॥
लब्धायां शुद्धसंवित्तौ मोहाहङ्कारविस्मृतौ। उत्पद्यते य आनन्दः सोऽयमानन्दलक्षणः ॥३४॥
शब्दब्रह्मोपसंहृत्य त्रिगुणात्मकमात्मनि। अविनाभावचिच्छक्तिः परब्रह्मणि लीयते ॥३५॥
एतद्यथा न विज्ञातं नृणां दुस्त्यजकर्मणाम्। नाम्नां सहस्रमाचक्ष्ये शैवानां परमुक्तये ॥३६॥
सहस्रनामविद्यान्तां व्याहरिष्यामि देहिनाम्। श्रीमत्तोऽपि यथा श्रीमान् मुच्यते कर्मबन्धनात् ॥३७॥
ॐ अस्य श्रीसदाशिवदिव्यसहस्रनाममन्त्रस्य ईश्वर ऋषिः। अनुष्टुप्छन्दः। श्रीपरमशिवो देवता। ॐ बीजम्। नमः शक्तिः। शिवाय कीलकम्। निर्मलज्ञानार्थे जपे विनियोगः।
शान्तं पद्मासनस्थं शशधरमुकुटं पञ्चवक्त्रं त्रिनेत्रं शूलं वज्रं च खड्गं परशुमभयदं दक्षिणाङ्गे वहन्तम्।
नागं पाशं च घण्टां डमरुकसहितं चाऽङ्कुशं वामभागे नानालङ्कारदीप्तं स्फटिकमणिनिभं पार्वतीशं नमामि ॥३८॥

---

आत्मानन्दमा नित्य रमाउने शिवतत्त्व नै ब्रह्मतत्त्व हो, त्यो ब्रह्मतत्त्व कस्तो हुन्छ भन्ने कुरा वाणीद्वारा पनि व्यक्त गर्न सकिदैन। त्यो ब्रह्मतत्त्व सर्वोत्तम धाम हो, परम सत्य हो, परम ज्योति हो र सनातन सत्य हो। त्यही ब्रह्म म परमात्मा शिव हुँ, मलाई योगीहरूले अद्वैत ज्ञान–विज्ञानको आधारमा आफ्नै आत्माभित्र दर्शन गर्दछन्, जसरी जङ्गलमा परस्पर काठहरूको घर्षण हुँदा अग्निको दर्शन गर्न सकिन्छ। जागतिक उपाधि र जगत्का विषयभोग प्राप्त गर्ने सङ्कल्पबाट रहित भएर अद्वैत परमात्माको ज्ञानद्वारा सुस्तरी निराकार म शिवको चिन्तन गर्दै, कर्म गरे तापनि फलप्राप्तिको आशा नहुनाले कर्मजन्य फलको लेप नहुँदा नैष्कर्म्यसिद्धि हुनाले आध्यात्मिक, आधिदैविक र आधिभौतिक तापबाट मुक्त र दुष्ट–पाप आदि बन्धनका कारणबाट पनि मुक्त भएको साधकले अविद्याको सागरबाट पार भई परम आनन्द र परम शान्ति प्राप्त गर्दछ ॥२८–३१॥

प्रबल तेजस्वी आत्मा भएका ज्ञानीको उपाधि भेदन गर्ने सामर्थ्यबाट घटघटबासी अन्तर्यामी म निर्मल फटिकभैँ स्वच्छ रूप लिएर प्रकट हुन्छु। म सम्पूर्ण प्राणीहरूको अन्तरात्मा हुँ र सम्पूर्ण प्राणीहरूका आत्मा मेरो आत्मामा रहेका छन्। जुन साधकले यसरी मेरो विज्ञानको अनुभव गर्दछ, त्यस अवसरमा त्यस साधकको हृदयमा मेरो ऐश्वर्य आफै भल्भलाकार हुन्छ। मोह र अहङ्कारको निवृत्तिपछि शुद्ध संवित्ति अर्थात् निर्मल ज्ञानको प्राप्ति हुँदा जुन आनन्द उत्पन्न हुन्छ त्यही आनन्द आनन्दलक्षण परब्रह्मको अनुभूति हो भनी बुझ्नुपर्दछ। परब्रह्म परमात्मा शिवविना रहनै नसक्ने चैतन्यशक्ति त्रिगुणमय शब्दब्रह्मलाई आत्मामा बिसाएर निर्मल भई परब्रह्ममा लीन हुन्छ। आत्मप्राप्तिको उक्त सरणि नजानेका र कर्मपरम्पराबाट मुक्त नभएका शिवभक्तहरूको परामुक्तिका लागि म शिवसहस्रनाम बताउनेछु। आज म प्राणीहरूको उपकारका लागि त्यो महिमामय सहस्रनाम विद्या बताउनेछु, जुन विद्याको निरन्तर अभ्यास गर्नाले धनपैसाले उन्मत्त भएको अहङ्कारी पुरुष पनि कर्मबन्धनबाट मुक्त हुन्छ ॥३२–३७॥

सहस्रनामको विनियोग

ॐ यस श्री सदाशिव दिव्यसहस्रनाम मन्त्रका ऋषि ईश्वर हुन्, छन्द अनुष्टुप् हो, देवता परमशिव हुन्, बीज ओङ्कार हो र शक्ति नमः हो। म यसको निर्मल ज्ञानप्राप्ति गर्ने उद्देश्यले गरिने जप वा पाठका लागि विनियोग गर्दछु।

आरम्भवन्दना

शान्त मुद्रामा पद्मासनमा विराजमान चन्द्रमालाई मुकुटका रूपमा धारण गर्नुहुने, सद्योजात, अघोर, तत्पुरुष, वामदेव एवं ईशाननामक ५ मुखब्रह्मद्वारा शोभायमान, सूर्य, चन्द्र एवं अग्निलाई तीन नयनका रूपमा धारण गर्नुहुने, त्रिशूल, वज्र, तरवार, बञ्चरो र अभयमुद्रालाई शरीरको दायाँ अङ्गमा धारण गर्नुहुने, नाग, पाश, घण्टा, डमरु र अङ्कुशलाई बायाँ अङ्गमा धारण गर्नुहुने अनेक किसिमका अलङ्कारको दीप्तिद्वारा चमत्कृत भई स्फटिक मणिसमान देखिनुहुने पार्वतीपति परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥३८॥

अथ सहस्रनाम

ॐकारः केवलो देवो महादेवो महेश्वरः । निरक्षरो निरालम्बो निष्प्रपञ्चो निरामयः ॥३९॥
निर्विकारो निराकारो निर्विकल्पो निरञ्जनः । निःस्पृहो निरहङ्कारो निरवद्यो निरुद्भवः ॥४०॥
निर्मलो निर्गुणो नित्यो निरूपाधिर्निरन्तरः । निरीहो निलयोऽनीशो नैष्कर्म्यो निरूपद्रवः ॥४१॥
आनन्दः परमानन्दो भैरवो भुवनेश्वरः । आत्मारामः शिवो हंसो विरागो विरजो विभुः ॥४२॥
विरामो विक्रमो विष्णुर्विश्वो विश्वम्भरः प्रभुः । निस्सङ्गो विमलो वेद्यो विधाता विशदोदरः ॥४३॥

---

सदाशिव-दिव्य-सहस्रनाम

(१) ॐकारः – अ-उ-म अर्धमात्रा+नाद++बिन्दु शक्ति यी प्रणवरूपा वाणी जुटेर बनेको ॐ यस्तो अक्षरका रूपमा प्रसिद्ध हुनुभएका भगवान् सदाशिव, (२) केवलः – असाधारण वा शुद्ध श्रेष्ठ परमात्मा, (३) देवः – अत्यन्त दीप्तिमान् देवता, (४) महादेवः – सबैभन्दा ठूला देवता, (५) महेश्वरः – महान् ऐश्वर्यका अधिपति परमेश्वर, (६) निरक्षरः – मोक्षभन्दा माथि रहनुभएका सच्चिदानन्द लक्षण परमात्मा, (७) निरालम्बः – अरू कसैको आधारमा नरहनुहुने अर्थात् स्वयं सबैका आधार बन्नुहुने, (८) निष्प्रपञ्चः – संसार र संसारको जन्जालदेखि मुक्त भई आत्मानन्दमा रमाउनुहुने, (९) निरामयः – संसारका रोग, दुःख आदिबाट मुक्त शुद्धस्वरूप परमात्मा परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥३९॥

(१०) निर्विकार– त्रिगुणनिर्मित विकाररहित, शुद्ध एवं अपरिवर्तनीय, (११) निराकारः – निर्गुणरूप, परमात्मा वा आकार एवं रूपरहित परमात्मा, (१२) निर्विकल्पः – विकल्प, परिवर्तन एवं भेदभावरहित परमात्मा अथवा वेदान्तअनुसार ज्ञाता र ज्ञेयमा भेद नहुने अवस्था, जसमा जीवात्मा र परमात्माको एकरूपता हुन्छ, (१३) निरञ्जनः – मायायुक्त सदाशिव परमात्मा, (१४) निस्पृहः – मायिक प्रपञ्चमा कुनै स्पृहा नराख्नुहुने, (१५) निरहङ्कारः – म नै सबै गर्ने हुँ भन्ने भावना भएको अन्तःकरणको वृत्तिदेखि मुक्त हुनुभएका, (१६) निरवद्यः – वेदान्तवाक्यबोध्य अथवा दोषनिर्मुक्त, (१७) निरुद्भवः – उत्पत्तिरहित वा अजन्मा परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥४०॥

(१८) निर्मलः – अविद्या आदि मलरहित, (१९) निर्गुणः – सत्त्व, रज र तमनामक गुणदेखि पर रहनुभएका, (२०) नित्यः – तीनै कालमा अविनाशी सनातनरूपमा रहनुहुने, (२१) निरुपाधि– सांसारिक मायादेखि मुक्त, (२२) निरन्तरः – अखण्ड सत्यका रूपमा रहनुहुने, (२३) निरीहः – विरक्त अथवा कुनै कामना नभएका, (२४) निलयः – सम्पूर्ण जीवहरूलाई लय गराई आफूमा राख्नुहुने, (२५) अनीशः – स्वयं प्रकाश, स्वयं ईश्वर, जसको कुनै ईश्वर वा शासक छैन अथवा विष्णु, (२६) नैष्कर्म्यः – कर्मको जालबाट मुक्त, (२७) निरुपद्रवः – इन्द्रिय, अज्ञान र मायाको उपद्रवशून्य अथवा शान्त परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥४१॥

(२८) आनन्दः – सुखस्वरूप, (२९) परमानन्दः – ब्रह्मानन्दस्वरूप, (३०) भैरवः – भयङ्कर अथवा शिवगणका रूपमा रहेका देवता, (३१) भुवनेश्वरः – भुवनेश्वरी महाविद्याका स्वामी सदाशिव, (३२) आत्मारामः – आत्मामा रमाउनुहुने, (३३) शिवः – शक्तिद्वारा सुहाउनुभएका शङ्कर, (३४) हंसः – हंसगायत्रीद्वारा उपास्य परब्रह्म, (३५) विरागः– राग वा आसक्तिले रहित, (३६) विरजः – रजोगुणशून्य शिव परमात्मा, (३७) विभुः – सर्वव्यापक परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥४२॥

(३८) विरामः – विष्णुका रूपमा रहनुहुने, (३९) विक्रमः – वामनावतार विष्णुका रूपमा रहनुहुने (४०) विष्णुः – सर्वव्यापक परमात्मा अथवा नारायणका रूपमा प्रकट हुनुहुने, (४१) विश्वः – विश्वेदेव, जीवात्मा अथवा विष्णुका रूपमा वर्तमान, (४२) विश्वम्भरः – सम्पूर्ण विश्वको पालन गर्नुहुने, (४३) प्रभुः – परमेश्वर, (४४) निस्सङ्गः – मायारहित, एकाकी रहनुभएका, (४५) विमलः – निर्मल आत्मज्योतिद्वारा प्रकाशमान, (४६) वेधाः – ब्रह्माका रूपमा रही सृष्टि गर्नुहुने, (४७) विधाता– परमेश्वर, ब्रह्म, ब्रह्माजी, भाग्य, कामदेव अथवा विश्वकर्माका रूपमा रहनुहुने, (४८) विशदोदयः – उज्ज्वल ज्योतिका रूपमा सूर्य वा चन्द्र बनेर उदाउनुहुने परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥४३॥

पुराणः पुरुषः पूर्णः पुरजित् पुरसूदनः । पुण्यः पुण्योदयः पद्मः पावनः परमेश्वरः ॥४४॥
अजः सिद्धः परो मुक्तः परमात्मा परप्रभुः । परं ब्रह्म परं व्योम परं सद्म परःपुमान् ॥४५॥
परमाणुरणुः सूक्ष्मः शुक्लज्योतिरतीन्द्रियः । ज्ञानगम्यो गुरुः शम्भुरमृतेश्वर ईश्वरः ॥४६॥
ध्येयो धर्मसुहृन्मित्रो निर्वाणश्चतुरात्मवान् । सद्विद्वान् वेदविद्वाँश्च शाक्तेयः शक्तिवल्लभः ॥४७॥
ध्रुवः सनातनो ज्ञानदीपः सर्वः पुरातनः । चिन्मात्रो नन्दको नन्दः षट्कर्मा ज्ञानभैरवः ॥४८॥

---

(४९) पुराणः – सबैभन्दा पुराना, (५०) पुरुषः – प्रत्येक प्राणीका हृदयपुरमा निवास गर्नुहुने, (५१) पूर्णः – परिपूर्ण ब्रह्म अथवा विष्णु, (५२) पुरजित् – त्रिपुरासुरको त्रिपुरमाथि विजय गर्नुहुने, (५३) पुरसूदनः – त्रिपुरासुरको संहार गर्नुहुने, (५४) पुण्यः – अत्यन्त पवित्र, राम्रो फलका रूपमा रहनुहुने, (५५) पुण्योदयः – पुण्यको उदयका रूपमा विराजमान, (५६) पद्मः – कमलपुष्पका रूपमा रहनुहुने, (५७) पावनः – सबैलाई पवित्र तुल्याउनुहुने, (५८) परमेश्वरः – महेश्वर, परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥४४॥

(५९) अजः – अजन्मा, (६०) सिद्धः – दैवी सिद्धिले सम्पन्न, (६१) परः – सबैभन्दा माथि रहनुहुने अथवा परब्रह्मस्वरूप, (६२) मुक्तः – संसारबन्धनबाट मुक्त परमात्मा, (६३) परमात्मा– परब्रह्म, (६४) परंप्रभुः – सर्वोपरि परमेश्वर, (६५) परंब्रह्म– निष्कल परमात्मा, (६६) परंव्योम– महाकाशका रूपमा वर्तमान, (६७) परंसद्म– परमधाम, (६८) परःपुमान्– महापुरुष परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥४५॥

(६९) परमाणुः – पाञ्चभौतिक परमाणुका रूपमा विराजमान, (७०) अणुः – अत्यन्त सूक्ष्मरूप धारण गर्नुहुने, (७१) सूक्ष्मः – सूक्ष्म शरीरका रूपमा रहनुहुने, (७२) शुक्लज्योतिः – सेतो ज्योतिका रूपमा रहनुहुने, (७३) अतीन्द्रियः – इन्द्रियातीत, (७४) ज्ञानगम्यः – विशुद्ध ज्ञानद्वारा प्राप्त हुनुहुने, (७५) गुरुः – अज्ञानको नाश गर्नुहुने, (७६) शम्भुः – कल्याणरूपधारी, (७७) अमृतेश्वरः – अमृतका स्वामी वा अविनाशी तत्त्वका स्वामी, (७८) ईश्वरः – सकल ऐश्वर्यका स्वामी वा संसारका स्वामी परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥४६॥

(७९) ध्येयः – सबैद्वारा ध्यान गर्न योग्य, (८०) धर्मसुहृत्– धर्मका मित्र, (८१) मित्रः – सूर्यका रूपमा रहनुहुने, (८२) निर्वाणः – मोक्षतत्त्वका रूपमा रहनुहुने, (८३) चतुरात्मवान्– विष्णुका रूपमा रहनुहुने अथवा कृष्ण, बलराम, प्रद्युम्न एवं अनिरुद्धका रूपमा रहनुहुने, (८४) सद्विद्वान्– सत्यको स्वरूपका ज्ञाता, (८५) वेदविद्वान्– वेदका रहस्यज्ञाता, (८६) शाक्तेयः – शक्तिका उपासक, (८७) शक्तिवल्लभः – शक्तिका प्यारा परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥४७॥

(८८) ध्रुवः – अचल, अथवा स्थिर अथवा उत्तानपादका पुत्रका रूपमा उत्तीर्ण, (८९) सनातनः – नित्यरूप, (९०) ज्ञानदीपः – ज्ञानका प्रकाशक, (९१) सर्वः– विष्णु वा शिवका रूपमा प्रकट हुनुहुने, (९२) पुरातनः – सर्वप्राचीन, (९३) चिन्मात्रः – विशुद्ध ज्ञानका रूपमा रहनुहुने परमात्मा, (९४) नन्दकः – श्रीकृष्ण वा विष्णुको तरवारका रूपमा रहनुहुने अथवा सबैलाई आनन्द दिनुहुने, (९५) नन्दः – सच्चिदानन्द परमेश्वर अथवा कृष्णका पिता नन्द, (९६) षट्कर्मा– यजन, याजन, अध्ययन, अध्यापन, दान, परिग्रहजस्ता ६ कर्म गर्ने विशुद्ध ब्राह्मणका रूपमा रहनुहुने, (९७) ज्ञानभैरवः – दशमहाविद्यामध्ये कमलात्मिका महाविद्याका भैरव नारायणलाई एवं भुवनेश्वरी महाविद्याका भैरव महादेवलाई ज्ञानभैरवका रूपमा लिन सकिने परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥४८॥

अपारः शाश्वतः शेषः प्रत्यग्ज्योतिरनामयः। विलोचनो विरूपाक्षः शङ्करो लोकशङ्करः ॥४९॥
योगो योगेश्वरो योगी योगविद् बन्धमोचनः। रहस्यः क्षत्रगो ज्ञेयः स्वच्छन्दो मुक्तिदायकः ॥५०॥
आद्यश्चक्रेश्वरः स्थाणुरद्वितीयोऽर्थतत्त्ववित्। सिद्धेश्वरो महाकालः सदानन्दः सदाशिवः ॥५१॥
कल्याणो नन्दकल्पश्च सुकल्पान्तो मनोमयः। वर्यो मृत्युञ्जयः शास्ता सत्साक्षी सुषमाश्रयः ॥५२॥
स्वयंप्रकाशः स्वाधारः कुलराजः कुलेश्वरः। मातृकापतिराचार्यः श्रीकण्ठः समयाधिपः ॥५३॥

---

(९८) अपारः – जसको आदि अन्तको पार पाउन सकिंदैन, (९९) शाश्वतः – सधैं एकनास भइरहने, (१००) शेषः – सबै प्रपञ्चको नाश अविनाशी भई शेष रहने, (१०१) प्रत्यग्ज्योतिः – ज्योतिर्मय, (१०२) अनामयः – आधिव्याधिरहित, (१०३) विलोचनः – विषम नयन, (१०४) विरूपाक्षः – तीन आँखा भएका विरूप, (१०५) शङ्करः – कल्याणकारी, (१०६) लोकशङ्करः – संसारको कल्याण गर्नुहुने परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥४९॥

(१०७) योगी– योगाभ्यास गर्नुहुने, (१०८) योगेश्वरः – योगशास्त्रका प्रवर्तक, (१०९) योगी– जीवात्मा र परमात्माको संयोग गराउनुहुने, (११०) योगविद्– योगको रहस्यका ज्ञाता, (१११) बन्धमोचनः– पशुहरूको पाश काट्नुहुने पशुपति, (११२) रहस्यः – अवाङ्मनोगोचर, (११३) क्षेत्रगः – क्षेत्रज्ञ भई प्रकृतिका अनेक रूपमा प्रवेश गर्नुहुने, (११४) स्वच्छन्दः – आफ्नै नियन्त्रणमा रहनुहुने, (११५) मुक्तिदायकः – भक्तलाई मुक्ति दिनुहुने परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥५०॥

(११६) आद्यः – ॐकाररूप, (११७) चक्रेश्वरः – मूलाधारदेखि सहस्रारसम्मका चक्रहरूका स्वामी, (११८) स्थाणुः – रूखको ठूटोझैं समाधिमा स्थिर, (११९) अद्वितीयः – एक आत्माका रूपमा रहनुहुने, (१२०) अर्थतत्त्ववित्– इन्द्रियार्थको रहस्य जान्नुहुने, (१२१) सिद्धेश्वरः – सिद्ध योगीहरूका स्वामी, (१२२) महाकालः – संहारका देवता वा प्रलयङ्कर देवता, (१२३) सदानन्दः – सत्यमा रमाउनुहुने, (१२४) सदाशिवः – सर्वदा कल्याणस्वरूप परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥५१॥

(१२५) कल्याणः – सर्वकल्याणको सिद्धान्त र प्रयोगका रूपमा रहनुहुने अथवा सौभाग्यका रूपमा रहनुहुने, (१२६) नन्दकल्पः – दुःखलाई सुखका रूपमा कायाकल्प गर्नुहुने, (१२७) सुकल्पान्त – कल्पलाई राम्ररी समाप्त गर्नुहुने अथवा अन्तःकरणमा जगत् सञ्चालनको कुशलता धारण गर्नुहुने, (१२८) मनोमयः – ज्ञानेन्द्रियसहित मनद्वारा निर्मित मनोमय कोशका रूपमा रहनुहुने अथवा प्रत्येक साधकको निर्मल मन एवं बुद्धिमा प्रतिबिम्बित हुनुहुने अथवा ध्यानद्वारा गरिने आराधनाका रूपमा मूर्त हुनुहुने, (१२९) वर्यः – सर्वोत्तम अथवा सबैद्वारा उपास्यका रूपमा वरणीय, (१३०) मृत्युञ्जयः – मृत्युमाथि विजय गरी सधैं भक्तहरूका अपमृत्यु, अल्पमृत्यु आदि निवारण गर्नुहुने, (१३१) शास्ता– आफ्ना पावन उपदेश, चरित्र र लीलाद्वारा मानवमात्रलाई अनुशासनमा राख्नुहुने, (१३२) सत्साक्षी– जगत्का घटनाहरूका सत्य साक्षी अन्तर्यामी परमेश्वर, (१३३) सुषमाश्रयः – भौतिक र आध्यात्मिक सौन्दर्यका परम आधार परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥५२॥

(१३४) स्वयंप्रकाशः – आफ्नै प्रकाशद्वारा प्रकाशित हुनुहुने, (१३५) स्वाधारः – आफ्नै आधारमा उभिनुहुने, (१३६) कुलराजः – कुलतन्त्रका प्रवर्तक, (१३७) कुलेश्वरः – कुलतन्त्रका स्वामी, (१३८) मातृकापतिः – 'अ' देखि 'ह' सम्मका वर्णका रूपमा रहनुहुने, (१३९) आचार्यः – संसारका परमगुरु, (१४०) श्रीकण्ठः – कालकूट विष जसको कण्ठको शोभा बनेर रहेको हुन्छ त्यस्ता श्रीकण्ठ शिव, (१४१) समयाधिपः – सन्ध्यासमयका स्वामी परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥५३॥

तत्त्वज्ञः सर्वगम्यार्थो ब्रह्मभूतिरगोचरः। ओजस्तेजोमयो बुद्धिर्गिरीशो वचसांपतिः ॥५४॥
रुद्रः पशुपतिस्त्वष्टा स्वाधिष्ठानप्रदीपकः। दुर्गो वेदान्तविज्ञेयो निष्कलङ्को महोदयः ॥५५॥
निर्मलो विश्वविश्रामो हरसिद्धश्चिराद्वपुः। ब्रह्मपारः परो लोकः पश्चिमाध्वविशारदः ॥५६॥
बीजकोशो जगद्वन्द्यो विजयो जगतांपतिः। अनुष्ठेयो महाविद्यो महाराजो विभुर्विराट् ॥५७॥
मृडस्तत्पुरुषोऽघोर ईशानः शशिशेखरः। सद्योजातो महादेवस्त्र्यम्बको भवनाशनः ॥५८॥

---

(१४२) तत्त्वज्ञः – परमात्मा, प्रकृति र विकृतिका ज्ञाता, (१४३) सर्वगम्यार्थः – जसका भोगोपकरण कपाल, खाट, सर्प, गोरु आदि तत्त्व सबैद्वारा ज्ञेय छन्, जसको कुनै विषय कसैबाट लुकेको हुँदैन त्यस्ता खुला स्वभावका परमेश्वर, (१४४) ब्रह्मभूतिः – ब्रह्मतत्त्वलाई नै आफ्नो विभूति मान्नुहुने, (१४५) अगोचरः – चर्मचक्षुद्वारा अदृश्य, (१४६) ओजः – प्रत्येक प्राणीमा ओज वा सत्त्वका रूपमा रहनुहुने, (१४७) तेजोमयः – प्रकाशस्वरूप, (१४८) बुद्धिः – निर्णयात्मक बुद्धितत्त्वका रूपमा विराजमान, (१४९) गिरीशः – कैलासगिरिका स्वामी, (१५०) वचसां पतिः – वाणीका स्वामी परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥५४॥

(१५१) रुद्रः – शिवका अवतार रुद्र, ब्रह्माजीको ललाटबाट पैदा भएका र शतरुद्रका रूपमा विख्यात, (१५२) पशुपतिः – जीवहरूका स्वामी पञ्चमुख शिव, (१५३) त्वष्टा– विश्वकर्माका रूपमा रहनुहुने, (१५४) स्वाधिष्ठानप्रदीपकः – आफ्नो नित्य धाम कैलासमा रही विश्वलाई प्रकाशित गर्नुहुने अथवा स्वाधिष्ठान चक्रलाई प्रकाशित गर्नुहुने, (१५५) दुर्गः – दुःखले वा कठोर तपस्याले प्राप्त गर्न सकिने, (१५६) वेदान्तविबोध्यः – उपनिषद् हरूको मनन गरेपछि जानिनुहुने, (१५७) निष्कलङ्कः – निर्मल ज्ञानस्वरूप, (१५८) महोदयः – मोक्षका रूपमा विराजमान परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥५५॥

(१५९) निर्मलः – अज्ञानमलरहित, (१६०) विश्वविश्रामः– संसारका अन्तिम विश्राम, (१६१) हरः – संसारको संहार गर्ने संहाराधिपति, (१६२) सिद्धः – सिद्ध योगी, (१६३) चिराद्– गरुडपक्षीका रूपमा रहनुहुने, (१६४) वपुः – सौन्दर्यरूपमा वर्तमान, (१६५) ब्रह्मपारः – ब्रह्मलाई नै अन्तिम सीमा मान्नुहुने, (१६६) परः – शिव वा ब्रह्माका रूपमा रहनुहुने, (१६७) लोकः – चराचरात्मक संसार बनेर आफै रहनुभएका, (१६८) पश्चिमाध्वा– पश्चिमाम्नायका रूपमा रहनुभएका, (१६९) विशारदः – सर्वकलाकुशल परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥५६॥

(१७०) बीजकोश– ॐ ह्रीं क्लीं श्रीं ऐं आदि बीजमन्त्रका खजाना, (१७१) जगत्– संसारका रूपमा स्वयं परिणत, (१७२) वन्द्यः – सर्ववन्दनीय, (१७३) विजयः – विजयश्री बनेर रहनुहुने अथवा कृष्णका सखा अर्जुनका रूपमा रहनुहुने, (१७४) जगतां पतिः – जगदीश्वर, (१७५) अनुष्ठेयः – उपासनीय परमेश्वर, (१७६) महाविद्यः – काली, तारा आदि महाविद्या धारण गर्नुहुने, (१७७) महाराजः – सम्पूर्ण राजाहरूका पनि महाराजा बनेर ब्रह्माण्डमा शासन गर्नुहुने अथवा कुबेरका रूपमा रहनुहुने, (१७८) विभुः – सम्पूर्ण चराचरमा व्याप्त हुनुभएका, (१७९) विराट्– स्थूलरूपधारी परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥५७॥

(१८०) मृडः – सुखस्वरूप, (१८१) तत्पुरुषः – पञ्चमुख पशुपतिका पूर्वतर्फको मुखब्रह्मका रूपमा विराजमान, (१८२) अघोरः – पशुपतिका दक्षिणतर्फको मुखब्रह्मका रूपमा विराजमान, (१८३) ईशानः – पशुपतिको उर्ध्वदिशाको मुखब्रह्मका रूपमा विराजमान, (१८४) शशिशेखरः – चन्द्रमौलि, (१८५) सद्योजातः – पशुपतिका पश्चिमतर्फको मुखब्रह्मका रूपमा विराजमान, (१८६) महादेवः – देवाधिदेव, (१८७) त्र्यम्बकः – तीन नयन धारण गर्नुहुने, (१८८) भवनाशनः – उपासकहरूको संसारयात्रा नाश गर्नुहुने परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥५८॥

पञ्चाक्षरः पञ्चवक्त्रः पञ्चवर्णस्त्रिलोचनः । भुजङ्गाभरणः शूली पाणिपात्रो दिगम्बरः ॥५९॥
धूर्जटिर्जटिलः शान्तो भस्मलेपः कपालिकः । भवो भूतपतिर्भीमो गौरश्चन्द्रोज्ज्वलद्युतिः ॥६०॥
पिनाकी प्रमथेशानो गोरक्षो वृषवाहनः । अमोघः स्थावरः शून्यो लयनादस्त्रिकालवित् ॥६१॥
नीलकण्ठोऽर्हणीयोऽर्होऽवधूतो मुक्तिसङ्गतः । ज्ञानोदर उमाकान्तो नादरूपाक्षरोऽक्षरः ॥६२॥
सत्पूज्यः सद्गतिः सभ्यः सहजः सत्यविक्रमः । महारुद्रो विश्वपतिस्तपःस्पर्धस्त्रयीमयः ॥६३॥

---

(१८९) पञ्चाक्षरः – "नमः शिवाय" यस रूपको पाँच अक्षरको मन्त्रद्वारा आराध्य, (१९०) पञ्चवक्त्रः – सद्योजात आदि पाँच मुखब्रह्मले सहित, (१९१) पञ्चवर्णः – ब्राह्मण, क्षत्रिय, वैश्य, शूद्र र अन्त्यज गरी ५ वर्णका रूपमा रहनुहुने, (१९२) त्रिलोचनः – तीन नयनले युक्त, (१९३) भुजङ्गाभरणः – सर्पलाई अलङ्कारका रूपमा धारण गर्नुहुने, (१९४) शूली– त्रिशूलधारी, (१९५) पाणिपात्रः – भिक्षुक योगीका रूपमा भिक्षाटन गर्दा हातमा नै भिक्षा थाप्नुहुने, (१९६) दिगम्बरः – नग्न अवस्थामा रहनुहुने परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥५९॥

(१९७) धूर्जटिः – जटाजूटको भार धारण गर्नुहुने, (१९८) जटिलः – जटाधारी, (१९९) शान्तः – शमलाई धारण गरी ध्यान गर्नुहुने, (२००) भस्मलेपः – शरीरमा विभूति लेपन गर्नुहुने, (२०१) कपालिकः – हातमा कपाल (नरमुण्ड) लिनुहुने, (२०२) भवः – संसारका उत्पादक, (२०३) भूतपतिः – प्राणीहरूका स्वामी, (२०४) भीमः – भयानक रूप धारण गर्नुहुने, (२०५) गौरः – गोरो वर्णका देखिनुहुने, (२०६) चन्द्रोज्ज्वलभूतिः – चन्द्रमाझैं ज्योतिर्मय भस्मलेपन गर्नुहुने परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥६०॥

(२०७) पिनाकी– पिनाकनामक धनु धारण गर्नुहुने, (२०८) प्रमथेशानः – प्रमथगणका स्वामी, (२०९) गोरक्षः – गाईको अथवा पृथिवीको अथवा वाणीको अथवा ज्ञानको रक्षा गर्नुहुने, (२१०) वृषवाहनः – साँढेमा सवार हुनुहुने अथवा धर्ममा विराजमान हुनुहुने, (२११) अमोघः – प्रत्येक कर्ममा सफल हुनुहुने, (२१२) स्थावरः – सम्पूर्ण अचर तत्त्वका रूपमा रहनुहुने, (२१३) शून्यः – आकाशका रूपमा विराजमान, (२१४) लयः – लयका रूपमा रहनुहुने, (२१५) नादः – सानुनासिक स्वर, जुन, अर्धचन्द्राकार चिह्नबाट व्यक्त हुन्छ। यो नाद प्राणिभव, अप्राणिभव र प्राणि–अप्राणिभव गरी तीन प्रकारको हुन्छ। मुख आदि अङ्गबाट उत्पन्न हुने प्राणिभव, वीणा आदिबाट उत्पन्न हुने अप्राणिभव बाँसुरी आदिबाट उत्पन्न हुने प्राणि–अप्राणिभव कहलाउँछन्। नाद ज्योति वा ब्रह्मरूप हुनाले दुईथरि पनि मानिएको छ। आहत नाद र अनाहत नाद। आहत नाद सबैले सुन्न सक्छन् तर अनाहत नाद योगीहरूले मात्र सुन्न सक्छन्। यही नादतत्त्वका रूपमा रहनुभएका शिवलाई नाद भनिन्छ, (२१६) त्रिकालवित्– भूत, भविष्य र वर्तमानका ज्ञाता परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥६१॥

(२१७) नीलकण्ठः – नीलो कण्ठले सुहाउनुभएका, (२१८) अर्हणीयः – पूजनीय, (२१९) अर्हः – सर्वकार्यसमर्थ, (२२०) अवधूतः – कुनै पनि विषयको चिन्ता नगर्ने संन्यासीका रूपमा रहनुहुने, (२२१) मुक्तिसङ्गतः – संसारबाट मुक्त हुनासाथ प्राप्त हुनुहुने, (२२२) ज्ञानोदरः – ज्ञानले परिपूर्ण हृदयका स्वामी, (२२३) उमाकान्तः – पार्वतीप्रिय, (२२४) नादरूपाक्षरः – नादबाट प्रकट हुने अक्षरमा विराजमान परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥६२॥

(२२५) अक्षरः – अविनाशी, (२२६) सत्पूज्यः – सज्जनहरूका पूजनीय, (२२७) सद्गतिः – सज्जनहरूका आश्रय, (२२८) सभ्यः – शास्त्रानुकूल शिष्ट व्यवहार गर्नुहुने, (२२९) सहजः – प्रत्येक प्राणीमा शील स्वभावका रूपमा रहनुहुने, (२३०) सत्यविक्रमः – सत्यको वा धर्मको स्थितिका लागि पराक्रम गर्नुहुने, (२३१) महारुद्रः – भगवान् शिव अथवा रुद्रको विधिले ११ ब्राह्मणद्वारा ११ आवृत्ति रुद्रीको एकदिन पाठ गरी गरिने कर्म जसलाई लघुरुद्री भनिन्छ, त्यस लघुरुद्रीद्वारा आराधना गरिने महारुद्र, (२३२) विश्वपतिः – ब्रह्माण्डका स्वामी, (२३३) तपःस्पर्धः – अनन्तकालसम्म तपस्या गर्ने हौसला राख्नुहुने, (२३४) त्रयीमयः – ऋग्वेद–यजुर्वेद र सामवेदका रूपमा रहनुहुने परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥६३॥

आर्यः स्वत्त्ययनो ज्ञाता स्वयम्प्रभुरनीश्वरः। सामध्वनिर्लयप्रज्ञो व्योमकेशः परन्तपः ॥६४॥
रम्यः सुखोदयश्चिन्त्योऽनलनेत्रस्त्रयीतनुः। विश्वगर्भो वेदगर्भः श्रीगर्भो नीललोहितः ॥६५॥
प्रधानादिस्त्रिधामूर्तिर्ब्रह्मयोनिर्महानिधिः। शिपिविष्टः स्फुरज्ज्योतिर्बोधाक्षस्तमसः परः ॥६६॥
द्यौर्मूर्धा दशदिग्बाहुश्चन्द्रसूर्याग्निलोचनः। पातालाङ्घ्रिरिलाकुक्षिः स्वर्मुखो गगनोदरः ॥६७॥
कलानादः कलाविन्दुः कलाज्योतिः सनातनः। अलौकिकः कलाधारः कैवल्यफलदायकः ॥६८॥
कौलः कुलेशः कुलजः कविः कर्पूरभास्वरः। कामेश्वरः कृपासिन्धुः कुशलः कुलभूषणः ॥६९॥

---

(२३५) आर्यः – सज्जनशिरोमणि, (२३६) स्वस्त्ययनः – कल्याणधाम, (२३७) ज्ञाता– ज्ञानसागर, (२३८) स्वयंप्रभुः – विनाप्रयास विश्वाधिपति बन्नुभएका, (२३९) अनीश्वरः – जसको कुनै शास्ता छैन, त्यस्ता स्वयं ईश्वर, (२४०) सामध्वनिः – सामवेदको सङ्गीतमय ध्वनिका रूपमा प्रकट हुनुहुने, (२४१) लयप्रज्ञः – समध्वनिमा आफूलाई लीन गराउनुहुने महामनीषी, (२४२) व्योमकेशः – आकाशलाई केशका रूपमा धारण गर्नुहुने, (२४३) परन्तपः – मनोविकार रूप शत्रुको दमन गर्नुहुने परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥६४॥

(२४४) रम्यः – रमणीय एवं शान्त स्वभावले सुहाउनुभएका, (२४५) सुखोदयः – आनन्दका मुहान, (२४६) चिन्त्यः – सधैं चिन्तन गर्नुपर्ने परमात्मा, (२४७) अनलनेत्रः – आँखीभौंमा ज्ञान वा अग्निका रूपमा तेस्रो आँखा धारण गर्नुहुने, (२४८) त्रयीतनुः – तीन वेदलाई शरीरका रूपमा धारण गर्नुहुने, (२४९) विश्वगर्भः – विश्वब्रह्माण्डलाई आफ्नै पेटभित्र राख्नुहुने, (२५०) वेदगर्भः – ब्रह्म वा वेदलाई आफैभित्र राख्नुहुने, (२५१) श्रीगर्भः – शोभा, सम्पदा र लक्ष्मीका मुहान, (२५२) नीललोहितः – नीलो र रातो रङ्ग मिसिएको अलौकिक दिव्य रूप धारण गर्नुहुने परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥६५॥

(२५३) प्रधानादिः – सृष्टिको आरम्भ गर्दा प्रकृतिलाई अगाडि लगाउनुहुने, (२५४) त्रिधामूर्तिः – मूर्ति, लिङ्ग र कैलासवासी दिव्य स्वरूप परमात्मा गरी ३ रूपमा व्यक्त हुनुहुने, (२५५) ब्रह्मयोनिः – ब्रह्मतत्त्व वा वेदका मुहान, (२५६) महानिधिः – अनेकौं निधिहरूका पनि निधि, (२५७) शिपिविष्टः – ज्योतिका किरणहरूमा शयन गर्नुहुने, (२५८) स्फुरज्ज्योतिः – चहकिलो ज्योतिका रूपमा रहनुहुने, (२५९) बोधाक्षः – ज्ञाननेत्र, (२६०) तमसः परः – कालो अज्ञानको अन्धकारदेखि पर ज्योतिको वा ज्ञानको ध्यानमा विराजमान परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥६६॥

(२६१) द्यौर्मूर्धा– द्युलोकलाई शिरका रूपमा धारण गर्नुहुने, (२६२) दशदिग्बाहुः – दश दिशालाई भुजाका रूपमा धारण गर्नुहुने, (२६३) चन्द्रसूर्याग्निलोचनः – चन्द्र, सूर्य र अग्नि गरी ३ नयन धारण गर्नुहुने, (२६४) पातालाङ्घ्रिः – पाताललाई पाउका रूपमा धारण गर्नुहुने, (२६५) स्वर्मुखः – स्वर्गलाई मुखका रूपमा धारण गर्नुहुने, (२६६) गगनोदरः – आकाशलाई पेटका रूपमा धारण गर्नुहुने परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥६७॥

(२६७) कलानादः – कलामय नाद ध्वनन गर्नुहुने, (२६८) कलाबिन्दुः – कलात्मक वीर्यका स्वामी वा ५ किसिमका कलालाई तिलकका रूपमा धारण गर्नुहुने, (२६९) कलाज्योतिः – कलात्मक ज्योतिका स्वामी, (२७०) सनातनः – नित्य एवं अविनाशी, (२७१) अलौकिकः – पञ्चमहाभूतनिर्मित संसारभन्दा पर रहनुभएका, (२७२) कलाधारः – सम्पूर्ण कलाका आधार, (२७३) कैवल्यफलदायकः – उपासकहरूलाई मोक्षरूप फल दिनुहुने परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥६८॥

(२७४) कौलः – कुलतन्त्रका आचार्य, (२७५) कुलेशः – कुलतन्त्रका स्वामी, (२७६) कुलजः – आफूलाई कुलतन्त्रमा आविर्भाव गराउनुहुने, (२७७) कविः – ऋषि वा ज्ञानी अथवा वेदसाहित्यका रचयिता, (२७८) कर्पूरभास्वरः – कपूरझैं गोरो वर्णका अथवा उज्ज्वल, (२७९) कामेश्वरः – कामदेवका जीवनदाता ईश्वर, (२८०) कृपासिन्धुः – करुणासागर, (२८१) कुशलः – लोकको उद्धार गर्न सिपालु, (२८२) कुलभूषणः – कुलतन्त्रका अलङ्कार परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥६९॥

कौपीनवसनः कान्तः केवली कल्पपादपः । कपाली कर्मरहितः कैलाशनिलयः कुलः ॥७०॥
कटाक्षविपुलः कर्ता कोविदः कामशासनः । कपर्दी केशरी कालः कल्पनारहिताकृतिः ॥७१॥
खखेलः खेचरः ख्यातः ख्यातवादी खमुद्गतः । खाम्बरः खण्डपरशुः खचक्षुः षट्कलोदयः ॥७२॥
अखण्डो ब्रह्मखण्डश्रीरखण्डज्योतिरव्ययः । षट्चक्रखेलनः षष्ठः खज्योतिः षड्भिरर्चितः ॥७३॥
गरिष्ठो गोपतिर्गोप्ता गम्भीरो ब्रह्मगोलकः । गोवर्धनोऽनन्तगोविद् गर्वातीतो गुणाकरः ॥७४॥
गङ्गाधरोऽसङ्गगम्यो गकारो गह्वरागमः । गगनाख्योऽगर्भवासो गरलाशो गणेश्वरः ॥७५॥

---

(२८३) कौपीनवसनः – कौपन वस्त्र (लंगोटी) लगाउनुहुने, (२८४) कान्तः – अत्यन्त सुन्दर, (२८५) केवली – एकाकी मोक्षानन्दमा रमाउनुहुने, (२८६) कल्पपादपः – कल्पवृक्षले झैं भक्तहरूलाई सबै विषय दिनुहुने, (२८७) कपाली– हातमा खप्पर धारण गर्नुहुने, (२८८) कर्मरहितः – नैष्कर्म्यभाव अँगाली ब्रह्मरूपमा रहनुहुने, (२८९) कैलासनिलयः – कैलासधाममा निवास गर्नुहुने, (२९०) कुलः – प्रकृति, काल, आकाश, तेज, वायु, पृथिवी आदि कुलका रूपमा रहनुहुने परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥७०॥

(२९१) कटाक्षविपुलः – एउटै कटाक्षपातले विशाल ब्रह्माण्डको उदय र अवसान गराउनुहुने, (२९२) कर्ता– विश्वब्रह्माण्डका रचयिता, (२९३) कोविदः – विद्यासागर अथवा परम ज्ञानी, (२९४) कामशासनः – कामदेवमाथि शासन गर्नुहुने, (२९५) कपर्दी– जटाजूट धारण गर्नुहुने, (२९६) केसरी– विश्वब्रह्माण्डका नायक महावीर वा वीर सिंह, (२९७) कालः – समय वा मृत्युका रूपमा रहनुहुने, (२९८) कल्पनारहिताकृतिः – कसैले पनि कल्पना गरेर थाहा नपाउने अकल्पनीय आकार प्रकारले सुहाउनुभएका परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥७१॥

(२९९) खखेलः – शून्यमा विहार गर्नुहुने, (३००) खेचरः – आकाशमा विचरण गर्नुहुने, (३०१) ख्यातः – शब्दब्रह्मका रूपमा विख्यात, (३०२) ख्यातवादी– शैव सिद्धान्तका रूपमा विख्यात आफ्नो सामरस्य सिद्धान्तको व्याख्या गर्नुहुने, (३०३) खमुद्गतः – शून्यमा रही ब्रह्मतत्त्व साक्षात्कार गर्नुहुने, (३०४) खाम्बरः – दिगम्बर, (३०५) खण्डपरशुः – एउटा धार भाँचिएको बञ्चरो धारण गर्नुहुने, (३०६) खचक्षुः – सूर्य, चन्द्र आदिका रूपमा आकाशमा रहेर संसारलाई दर्शनशक्ति दिनुहुने, (३०७) षट्कलोदयः – ५ ज्ञानेन्द्रिय र मनसहित ६ कलाको उदय गराउनुहुने परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥७२॥

(३०८) अखण्डः – एकात्मक स्वरूपधारी, (३०९) ब्रह्मखण्डश्रीः – प्रत्यगात्माको सौन्दर्यका रूपमा विराजमान, (३१०) अखण्डज्योतिः – विश्वव्यापी प्रकाशपुञ्ज, (३११) अव्ययः – अविनश्वर, (३१२) षट्चक्रखेलनः – कुण्डलीयोगका अधिष्ठान आदि सहस्रार पर्यन्तका चक्रहरूमा क्रीडा गर्नुहुने, (३१३) खज्योतिः – जुनकिरीका रूपमा प्रकाश प्रवाहित गर्ने, (३१४) षष्ठः – पाँच ज्ञानेन्द्रियपछि छैठौं इन्द्रिय मनका रूपमा रहनुहुने, (३१५) षड्भिरर्चितः – स्वामी कुमारका ६ वटै मुखहरूद्वारा पूजित परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥७३॥

(३१६) गरिष्ठः – अत्यन्त गौरवशाली, (३१७) गोपतिः – पृथिवीपतिः, (३१८) गोप्ता– सबैका रक्षक, (३१९) खचक्षुः – आकाशका सूर्यादिलाई आँखाका रूपमा धारण गर्नुहुने, (३२०) गम्भीरः – गहन, (३२१) ब्रह्मगोलकः – ब्रह्माण्ड बनेर रहनुहुने, (३२२) गोवर्धनः – गोवर्धन पर्वतका रूपमा रहनुहुने अथवा गाईको बृद्धि गराउनुहुने अथवा ज्ञानको वृद्धि गराउनुहुने अथवा पृथिवीको वृद्धि गराउनुहुने, (३२३) अनन्तगोविद्– अनन्तज्ञानका ज्ञाता, (३२४) गर्वातीतः – अहङ्कारशून्य, (३२५) गुणाकरः – सद्गुणका खानी परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥७४॥

(३२६) गङ्गाधरः– गङ्गालाई जटाजूटमा धारण गर्नुहुने, (३२७) असङ्गगम्यः – एकान्त साधनाबाट प्राप्त गर्न सकिने, (३२८) गकारः – गणेशका रूपमा अवतार लिनुहुने अथवा आकाशका रूपमा व्याप्त हुनुहुने, (३२९) गह्वरागमः – गहन आगमशास्त्रद्वारा गम्य अथवा गुफावासी मुनिद्वारा प्राप्त गर्न सकिने, (३३०) गगनाख्यः – आकाश वा शून्यका रूपमा प्रसिद्ध, (३३१) अगर्भवासः – आमाको गर्भमा कहिल्यै पनि बास नगर्नुहुने, (३३२) गरलाशः – संसारको रक्षाका लागि कालकूट विषपान गर्नुहुने, (३३३) गणेश्वरः – गणहरूका स्वामी परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥७५॥

घण्टारवः सिद्धघण्टो जयघण्टाध्वनिप्रियः। घण्टानादो महाघण्टश्चन्द्रघण्टः स्फुरद्वचाः ॥७६॥
घण्टास्वरो घण्टसिंहो घण्टिकाबलिमण्डितः। घण्टोदितकलानन्दः परवैराग्यसाधनः ॥७७॥
चित्रो विचित्रसंकल्पो विचित्रविशदोदयः। विचित्रगतिराचार्यश्चित्रगर्भश्चिरन्तनः ॥७८॥
चिद्रूपश्चिल्लयश्चेतश्चञ्चरीकश्चराचरः। चराचरगतिः स्वर्चिः स्वार्चिश्चर्योपदेशकः ॥७९॥
प्रपञ्चविच्चिदानन्दश्चिन्मयश्चेतनामयः। चन्द्रमौलिश्चितावासश्चैतन्यविषयोऽच्युतः ॥८०॥
अविच्छिन्नप्रभावश्रीश्छिन्नमूलो महाजयः। छान्दसोपनिषच्चक्षुश्छन्दसां प्रभवोऽव्ययः ॥८१॥
छिन्नपापश्छिन्नपाशो विच्छिन्नभययातनः। विच्छिन्नसङ्गसङ्कल्पो विच्छिन्नद्वीपसागरः ॥८२॥

---

(३३४) घण्टारवः– घण्टानादभैँ नाद जगाउनुहुने, (३३५) सिद्धघण्टः – घण्टनाद सिद्ध गरी संसारलाई नादानन्दमा निमग्न गराउनुहुने, (३३६) जयघण्टाध्वनिप्रियः – विजयघण्टाको ध्वनि मन पराउनुहुने, (३३७) घण्टानादः – घण्टानादसमान वा वीणाध्वनिसमान नाद जगाउनुहुने, (३३८) महाघण्टः – स्वयं महाघण्टानादमा रमाउनुहुने, (३३९) चन्द्रघण्टः – चन्द्रमालाई महाघण्टासरह धारण गर्नुहुने, (३४०) स्फुरद्वचाः – पवित्र वाणीको मुहान परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥७६॥

(३४१) घण्टास्वरः – घण्टाको स्वरभैँ स्वर उच्चारण गर्नुहुने, (३४२) घण्टसिंहः – नादहरूमा सर्वोत्तम घण्टानाद घण्टासिंहको नाद लगाउनुहुने, (३४३) घटिकालिमण्डित – घटिकापङ्क्तिले सुहाउनुभएका, (३४४) घण्टोदितकलानन्दः – घण्टानादबाट आत्मकलाको आनन्द जगाउनुहुने, (३४५) परवैराग्यसाधनः – उत्तम वैराग्यका साधक उपकरण धारण गर्नुहुने परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥७७॥

(३४६) चित्रः – अरू देवताभन्दा विलक्षण, (३४७) विचित्रसङ्कल्पः – आश्चर्यदायक सङ्कल्प गर्नुहुने, (३४८) विचित्रविशदोदयः – विचित्र र स्वच्छ ज्ञानका मुहान, (३४९) विचित्रगतिः – विलक्षण जीवनसरणि अँगाल्नुहुने, (३५०) आचार्यः – विलक्षण लीलाका सद्गुरु, (३५१) चित्रगर्भः – आफ्नो सङ्कल्पभित्र संसारचित्रको परिकल्पना गर्नुहुने, (३५२) चिरन्तनः – संसारका प्रथम र प्राचीन देवता परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥७८॥

(३५३) चिद्रूपः – ज्ञानरूप, (३५४) चिल्लयः – ज्ञानमा लीन, (३५५) चेतश्चञ्चरीकः – चित्तरूप भ्रमरले सुहाउनुभएका, (३५६) चराचरगतिः – स्थावर एवं जङ्गमका आधार, (३५७) स्वर्चिः – सुन्दर किरणले युक्त, (३५८) स्वार्चिः – आफ्नै किरणले युक्त, (३५९) चर्योपदेशकः – सत्क्रियाका गुरु परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥७९॥

(३६०) प्रपञ्चवित्– संसार प्रपञ्चलाई राम्ररी जान्नुहुने, (३६१) चिदानन्दः – ज्ञानानन्दमा रमाउनुहुने, (३६२) चिन्मयः – प्रकाशमय वा ज्ञानमय, (३६३) चेतनामयः – चैतन्यमय, (३६४) चन्द्रमौलिः – शिरमा चन्द्रमा धारण गर्नुहुने, (३६५) चितावासः – मसानमा बस्नुहुने, (३६६) चैतन्यविषयः – चैतन्यलाई शुद्ध र जागरूक तुल्याउनुहुने, (३६७) अच्युतः – अविनाशी वा च्युत नहुनुहुने परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥८०॥

(३६८) अविच्छिन्नप्रभावः – अखण्ड प्रभावशाली, (३६९) अविच्छिन्नश्रीः – अखण्ड शोभा सम्पन्न, (३७०) छिन्नमूलः – संसारको जरा काट्नुभएका, (३७१) महाजयः – सधैँका लागि प्रपञ्चलाई परास्त गर्नुभएका, (३७२) छान्दसः – वेदप्रतिपाद्य, (३७३) उपनिषच्चक्षुः – उपनिषद्का आँखाले संसारलाई नजर गर्नुहुने, (३७४) छन्दसां प्रभवः – वेदका मुहान, (३७५) अव्ययः – अविनाशी परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥८१॥

(३७६) छिन्नपापः – पापलाई छिन्नभिन्न तुल्याउनुहुने, (३७७) छिन्नपाशः – मायापाशलाई चुडाल्नुहुने, (३७८) विच्छिन्नभयः – भयलाई विच्छिन्न पार्नुभएका, (३७९) विच्छिन्नयातनः – सम्पूर्ण प्रपञ्चको यातनाबाट मुक्त, (३८०) विच्छिन्नसङ्गः– अरूका सङ्गतलाई छिन्न पार्नुभएका, (३८१) विच्छिन्नसङ्कल्पः – संसारको चिन्ताबाट मुक्त हुनुभएका, (३८२) विच्छिन्नद्वीपः – संसारका द्वीपहरूको सम्बन्ध छिन्न बनाउनुभएका, (३८३) विच्छिन्नसागरः – संसारका सागरहरूको सम्बन्धबाट मुक्त परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥८२॥

छिन्नमूलो महाबोधः शुद्धबोधः सदोदितः । शुद्धबोधविशुद्धात्मा विशुद्धज्ञानगौरवः ॥८३॥
शुद्धसत्त्वो विशुद्धान्तः सिद्धान्तः सिद्धसाधकः । अविनाशो निराभासः प्रपञ्चरहितो यती ॥८४॥
जगज्जीवो जगत्प्राणो जगदात्मा जगद्गुरुः । जगद्धव्यो जगद्योनिरयोनिर्जगदन्तकः ॥८५॥
जगद्धर्ता जगद्भर्ता जगद्बीजः सदोदयः । जगदीशो जगन्नाथो जगद्बन्धुर्जगत्पिता ॥८६॥
जितेन्द्रियो जितक्रोधो जितकामो जटाधरः । अजितो जितसङ्कल्पो जितविश्वोऽपराजितः ॥८७॥
योगज्ञानमहाराजो योगज्ञानमहाशिवः । योगज्ञानमहादेवो योगज्ञानमहेश्वरः ॥८८॥
योगज्ञानमहाबोधो योगज्ञानमहाकुलः । योगज्ञानमहायोगी योगज्ञानमहाबुधः ॥८९॥

---

(३८४) छिन्नमूलः – अज्ञानको मूल मायाको जरो काट्नुभएका, (३८५) महाबोधः – ज्ञानका महासागर, (३८६) शुद्धबोधः – निर्मल ब्रह्मबोधसम्पन्न, (३८७) सदोदितः – सधैं उदाउने ज्ञानसूर्य, (३८८) शुद्धबोधः – पवित्र एवं निर्मल ज्ञानसम्पन्न, (३८९) विशुद्धात्मा– निर्मलात्मा, (३९०) विशुद्धज्ञानः – विशुद्ध बोधले सम्पन्न, (३९१) विशुद्धगौरवः – शुद्ध महिमा भएका परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥८३॥

(३९२) शुद्धसत्त्वः – निर्मल ओजसम्पन्न, (३९३) विशुद्धान्तः – निर्मल अन्तःकरणले युक्त, (३९४) सिद्धान्तः – आफ्नो मत सिद्ध गर्नुभएका, (३९५) सिद्धसाधकः – साधकहरूलाई सिद्ध तुल्याउनुहुने, (३९६) अविनाशः – नाशरहित, (३९७) निराभासः – आभासरहित, (३९८) प्रपञ्चरहितः – संसारको वासनाशून्य, (३९९) यती– इन्द्रियजयी परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥८४॥

(४००) जगज्जीवः – जगत्का जीवन वा जीवरूपमा वर्तमान, (४०१) जगत्प्राणः – जगत्का प्राणतत्त्व, (४०२) जगदात्मा– जगत्का आत्मा, (४०३) जगद्गुरुः – जगत्का गुरु, (४०४) जगद्हव्यः – जगत्का विषयलाई पवित्र हवनीय बनाएर अर्पण गरी आराधनीय, (४०५) जगद्योनिः – जगत्को उत्पत्ति गराउने दिव्य साधन, (४०६) अयोनिः – स्वयम्भू, (४०७) जगदन्तकः – जगत्संहारक अथवा महाकाल परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥८५॥

(४०८) जगद्धर्ता– जगत्लाई आफैंमा लीन गराउनुहुने, (४०९) जगद्बीजः – जगत्का निदान, (४१०) सदोदयः – सदा उदीयमान अथवा अखण्ड प्रकाश, (४११) जगदीशः – जगदीश्वर, (४१२) जगन्नाथः – जगत्का एकमात्र शरणदाता, (४१३) जगद्बन्धुः – जगत्का हितैषी, (४१४) जगत्पिता– जगत्का रक्षक परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥८६॥

(४१५) जितेन्द्रियः – संयमी, (४१६) जितक्रोधः – क्रोधलाई वशमा ल्याउनुहुने, (४१७) जितकामः – वासनाविजयी, (४१८) जटाधरः – जटाधारी, (४१९) अजितः – विष्णुरूपका अवतीर्ण अथवा अपराजेय, (४२०) जितसङ्कल्पः – सङ्कल्पमाथि विजय प्राप्त गर्नुहुने, (४२१) जितविश्वः – विश्वमाथि एकाधिकार राख्नुहुने अथवा विश्वविजयी, (४२२) अपराजितः – अजेय भई रहनुभएका परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥८७॥

(४२३) योगज्ञानमहाराजः – अष्टाङ्गयोगको ज्ञानका सर्वोत्तम उपदेशक, (४२४) योगज्ञानमहाशिवः – योगको ज्ञानद्वारा महामङ्गल गर्नुहुने, (४२५) योगज्ञानमहादेवः – योगको ज्ञानका कारण देवाधिदेवका रूपमा दीप्तिमान्, (४२६) योगज्ञानमहेश्वरः – योगज्ञानको मुहान हुनुभएकाले महेश्वरका रूपमा पूजित हुनुभएका परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥८८॥

(४२७) योगज्ञानमहाबोधः – योगको ज्ञानका कारण ज्ञानसागर हुनुभएका, (४२८) योगज्ञानमहाकुलः – योगको ज्ञान प्रदान गर्नुभएका कारण तान्त्रिक महाकुलका सर्वोच्च आचार्य, (४२९) योगज्ञानमहायोगी– योगको ज्ञान विस्तार गर्न योगचर्यालाई विश्वव्यापी बनाएका कारण महायोगीका रूपमा विख्यात, (४३०) योगज्ञानमहाबुधः – योगज्ञानका महाविज्ञाता परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥८९॥

योगज्ञानमहानन्दो योगज्ञानमहार्णवः । योगज्ञानमहासेनो योगज्ञानमहातनुः ॥९०॥
विज्ञानभरितो विज्ञो विश्वगम्यो विशालधीः । विशालो विश्वसङ्केतो विशालज्ञानगोचरः ॥९१॥
योगारूढः समाधिस्थो व्रतस्थो व्रतदेवता । ज्ञानरूढो विरूढात्मा विश्वरूढो जनाश्रयः ॥९२॥
ज्ञानरूपो विरूपात्मा विश्वरूपो महोदरः । चराचरोदरः सत्त्वः सत्त्वबोधः परात्परः ॥९३॥
सिद्धयोगो महासत्त्वः सत्त्वस्थः सत्त्वविश्रमः । सत्त्वावस्थः सत्त्वराशिश्चिन्मयः सत्त्वकेवलः ॥९४॥
अन्तर्यामी सत्त्वसिन्धुः सत्त्वसंवित्तिकारकः । सत्त्वेन्दुर्विमलः श्रीमान् सत्त्वविद्योऽवबोधकः ॥९५॥
सत्वरः सत्त्वसद्भावः सत्त्वकल्याणदेशकः । निर्वाणसुखसन्तुष्टः सत्त्वविज्ञानलोचनः ॥९६॥

---

(४३१) योगज्ञानमहानन्दः – प्रकृति–पुरुष, सोम एवं अग्नि एवं जीव– परमात्माको योगज्ञान गरी त्यसमा आनन्द लिनुहुने, (४३२) योगज्ञानमहार्णवः – योगज्ञानका महासागर, (४३३) योगज्ञानमहासेनः – योग ज्ञानको जिज्ञासा गर्ने शिष्यहरूको ठूलो जमातका साथ सुहाउनुभएका, (४३४) योगज्ञानमहातनुः – योगको ज्ञानमा अखण्डरूपमा लाग्नुभएका कारण महाशरीरले सुहाउनुभएका परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥९०॥

(४३५) विज्ञानभरितः – विज्ञानले परिपूर्ण, (४३६) विज्ञः – अधिभूत, अधिदैव र अध्यात्मका विशिष्ट ज्ञाता, (४३७) विश्वगम्यः – विश्वका एकमात्र गन्तव्य, (४३८) विशालधीः – अनुपम–बुद्धिसम्पन्न, (४३९) विशालः – विराट् पुरुष, (४४०) विश्वसङ्केतः – विश्वलाई वेदाङ्ग ज्योतिषको माध्यमबाट शुभाशुभ कर्म सङ्केत गर्नुहुने, (४४१) विशिष्टज्ञानगोचरः – विशिष्ट ज्ञानद्वारा प्राप्त गर्न सकिने परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥९१॥

(४४२) योगारूढः – योगमा आरूढ भई विश्वलाई योगदृष्टिबाट नजर गर्नुहुने, (४४३) समाधिस्थः – समाधिमा रही आत्माको दर्शन गर्नुहुने, (४४४) व्रतस्थः – विश्वरक्षा व्रतमा तत्पर, (४४५) व्रतदेवता – व्रतको फलदाता देवताका रूपमा विराजमान, (४४६) ज्ञानरूढः – ज्ञानमा आरूढ भई विराजमान हुनुभएका, (४४७) विरूढात्मा– आत्मालाई ज्योतिर्मयरूपमा अङ्कुरित गराउनुहुने, (४४८) विश्वरूढः – आफ्नो इच्छा हुँदा विश्वलाई अङ्कुरित गराउनुहुने, (४४९) जनाश्रयः – आफूले रचना गरेका विश्ववासी नरनारीहरूलाई आश्रय दिनुहुने परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥९२॥

(४५०) ज्ञानरूपः – सकलजनमा ज्ञानका रूपमा वास गर्नुहुने, (४५१) विरूपात्मा – विरूपाक्षका रूपमा विराजमान, (४५२) विश्वरूपः – विराट् रूपमा रहनुहुने, (४५३) महोदरः – संसारका सकल जीवलाई एकैचोटि अटाउन सक्ने उदर भएका, (४५४) चराचरोदरः – आफ्नो पेटभित्र सकल स्थावर एवं जङ्गमलाई समाहित गर्नुहुने, (४५५) सत्त्वः – आत्मवल वा ओजका रूपमा रहनुहुने, (४५६) सत्त्वबोधः– अरूको आत्मशक्ति थाहा पाउनुहुने, (४५७) परात्परः – पराप्रकृति भन्दा पर रहनुभएका परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥९३॥

(४५८) सिद्धयोगः – योगलाई सिद्ध गर्नुभएका, (४५९) महासत्त्वः – प्रबल आत्मबली, (४६०) सत्त्वस्थः – ओज वा सबल आत्मामा प्रतिबिम्बित हुनुहुने, (४६१) सत्त्वविश्रामः – आत्मामा विश्राम गर्नुहुने, (४६२) सत्त्वावस्थः – सधैं आत्मरूपमा जागरूक हुने, (४६३) सत्त्वराशिः – आत्मशक्तिका महानिधि, (४६४) चिन्मयः – ज्ञानमय, (४६५) सत्त्वकेवलः – केवलात्मा परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥९४॥

(४६६) अन्तर्यामी– घटघटवासी, (४६७) सत्त्वसिन्धुः – आत्मबलका सागर, (४६८) सत्त्वकारकः – आत्मबलका उद्भावक, (४६९) संवित्तिकारकः – ज्ञानज्योतिका प्रकाशक, (४७०) सत्त्वेन्दुः – सत्त्वतत्त्वका चन्द्रमा, (४७१) निर्मलः – अज्ञानमलरहित, (४७२) श्रीमान्– लक्ष्मी, सम्पदा र सुषमाका मुहान, (४७३) सत्त्वविद्यः – आत्मतत्त्व वा ओजस्तत्त्वका ज्ञापक विद्याले सुहाउनुभएका, (४७४) अवबोधकः – विद्याका उपदेष्ट्य परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥९५॥

(४७५) सत्त्वरः – वेगवान्, (४७६) सत्त्वभावः – सत्त्वका रूपमा परिणत, (४७७) सद्भावः – सत्य वा निरन्तर तत्त्वका रूपमा विराजमान, (४७८) सत्त्वकल्याणदेशकः – प्राणीमात्रको कल्याणको उपदेष्य, (४७९) कल्याणदेशकः – कल्याणका उपदेष्य, (४८०) निर्वाणसुखसन्तुष्टः – मोक्षानन्द प्राप्त गरी सन्तुष्ट हुनुभएका, (४८१) सुखसन्तुष्टः – सुखरूप आत्मामा रमाउने, (४८२) सत्त्वविज्ञानलोचनः – सत्त्वज्ञानका आँखाले हेर्नुहुने, (४८३) विज्ञानलोचनः – विज्ञानका आँखाले हेर्नुहुने परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥९६॥

राजसः सृष्टिसंघातः सात्त्विकः सृष्टिपालकः। तामसः सृष्टिसंहर्ता त्रिधावस्थोऽतिविग्रहः ॥९७॥
अतर्क्यः सत्त्वशून्यार्हस्तत्त्वमात्रस्तमीश्वरः। त्रयीलोकस्त्रयीभासस्त्रयीदेवस्त्रयीश्वरः ॥९८॥
अन्तर्ज्योतिर्भासमानः स्वान्तर्ज्योतिःप्रतीपकः। आत्मज्योतिर्निष्कलाभो ब्रह्मज्योतिःप्रकाशकः ॥९९॥
सत्यज्योतिः सहस्राक्षः सत्यज्योतिःसुधारकः। ज्योतिःकृल्लौकिकप्रज्ञः प्रज्ञाज्योतिरलौकिकः ॥१००॥
ज्योतिरिन्द्रियसंवेद्यो लौकिकज्योतिषां पदम्। मूलाधारपराधीशः स्वाधिष्ठानविजृम्भकः ॥१०१॥
आदिनाथो महानाथो नाथनाथो नटेश्वरः। आद्ययोगी योगवक्ता योगगम्यो युगप्रभुः ॥१०२॥

---

(४८४) राजसः – रजोमूर्ति, (४८५) सृष्टिसंघातः – सृष्टिव्यूहका रूपमा विराजमान, (४८६) सात्त्विकः – सत्त्वमूर्ति, (४८७) सृष्टिपालकः – सत्त्वमूर्तिद्वारा सृष्टिको रक्षा गर्नुहुने, (४८८) तामसः – तमोमूर्ति, (४८९) सृष्टिसंहर्ता– सृष्टिको संहार गर्नुहुने, (४९०) त्रिधावस्थः – सत्त्व, रज र तमोगुणअनुसार तीन प्रकारका ब्रह्मा, विष्णु र शिवको रूप लिनुहुने, (४९१) अतिविग्रहः – विग्रहमुक्त निराकार रूपमा रहनुहुने परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥९७॥

(४९२) अतर्क्यः – तर्कद्वारा प्राप्त गर्न नसकिने, (४९३) सत्त्वशून्यार्ह्णः – आत्मशक्ति वा ओजलाई शून्य तुल्याउन समर्थ, (४९४) तत्त्वमात्रः – आत्मतत्त्वका रूपमा विराजमान, (४९५) तमीश्वरः – रात्रिनायक चन्द्रमाका रूपमा प्रकाशमानः, (४९६) त्रयीलोकः – श्रुतिका आँखाले संसार हेर्नुहुने अथवा तीन नेत्रद्वारा संसार हेर्नुहुने, (४९७) त्रयीभासः – श्रुतिका माध्यमले नै जिज्ञासुलाई आत्मतत्त्वको आभास गराउनुहुने, (४९८) त्रयीदेवः – त्रयीद्वारा प्रतिपादित देवता, (४९९) त्रयीश्वरः – त्रयीद्वारा ईश्वरका रूपमा आधारित परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥९८॥

(५००) अन्तर्ज्योर्तिभासमानः – घटघटमा भित्री ज्योतिका रूपमा प्रकाशमानः, (५०१) अन्तर्भासमानः – प्राणीभित्र विराजमान, (५०२) स्वान्तर्ज्योतिःप्रदीपकः – आफूभित्रको ज्योतिद्वारा जगत्लाई दीप्त गर्नुहुने, (५०३) स्वान्तःप्रदीपकः – आफ्नै आत्माद्वारा जगत् प्रकाशित गर्नुहुने, (५०४) आत्मज्योतिः – आत्माको ज्योतिले सुहाउनुभएका, (५०५) निष्कलाभः – कलारहित ब्रह्मको आभा धारण गर्नुहुने, (५०६) ब्रह्मज्योतिःप्रकाशकः – ब्रह्मको ज्योतिलाई प्रकाशित गर्नुहुने, (५०७) ब्रह्मप्रकाशकः – ब्रह्मतत्त्वलाई प्रकाशित गर्नुहुने परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥९९॥

(५०८) सत्यज्योतिः – सत्यधर्मको प्रकाश धारण गर्नुहुने, (५०९) सहस्राक्षः – सहस्र नयनले हेर्नुहुने, (५१०) सत्यज्योतिःसुधारकः – सत्यको ज्योतिद्वारा सबैको सुधार गर्नुहुने, (५११) सत्यसुधारकः– सत्यधर्मद्वारा लोकको उद्धार गर्नुहुने, (५१२) ज्योतिःकृत्– ज्योतिश्चक्रका स्रष्टा, (५१३) लौकिकप्रज्ञः – निराकार निर्गुणरूमा आध्यात्म प्रज्ञाद्वारा आलोकित हुनुभए पनि सर्वसाधारण नरनारीलाई व्यवहारार्थ लौकिक प्रज्ञा दिने, (५१४) प्रज्ञाज्योतिः – अध्यात्मज्ञानको ज्योतिले सम्पन्न, (५१५) अलौकिकः – लोकलाई प्रकाशित गर्नुभए पनि आफू लोकदेखि पर रहनुभएका परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥१००॥

(५१६) ज्योतिः – ज्योतिर्मय, (५१७) इन्द्रियसंवेद्यः – सूर्य, चन्द्र आदि ज्योतिरूपमा इन्द्रियद्वारा ज्ञेय, (५१८) लौकिकज्योतिषां पदम्– लोकमा देखिने ज्योतिका धाम, (५१९) ज्योतिषां पदम्– आध्यात्मिक ज्योतिका धाम, (५२०) मूलाधारपराधीशः – मूलाधार चक्रका परम देवता, (५२१) पराधीशः – मायादेखि पर रहनुभएका परमेश्वर, (५२२) स्वाधिष्ठानविजृम्भकः – स्वाधिष्ठान चक्रलाई जगाउनुहुने, (५२३) विजृम्भकः – सबै जीवहरूलाई मोहनिद्राबाट जगाउनुहुने परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥१०१॥

(५२४) आद्ययोगी – प्रथम योगी, (५२५) आद्यः – संसारका आदिपुरुष, (५२६) योगी– अष्टाङ्गयोगद्वारा जीव र ब्रह्मको एकता गराउनुहुने, (५२७) आदिनाथः – सदाशिव, (५२८) महानाथः – महानाथ अर्थात् गोरखनाथ, (५२९) नाथनाथः – मत्स्येन्द्रनाथ, (५३०) नटेश्वरः – ताण्डवनृत्य गर्ने सदाशिव, (५३१) योगवक्ता– योगशास्त्रका उपदेशकः, (५३२) योगगम्यः – योगद्वारा प्राप्त हुनुहुने, (५३३) युगप्रभुः – सत्य, त्रेता आदि युगका स्वामी परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥१०२॥

मणिपूरकयन्त्रस्थः कैलाशोऽनाहतध्वनिः । आज्ञाधारो विशुद्धस्थ ॐकारो योगवित्तमः ॥१०३॥
सहस्रदलमध्यस्थश्चन्द्रिकाद्रवसंयुतः । अन्तर्निष्ठो महायोगी स्वान्तर्योगः स्वयंसुखी ॥१०४॥
स्वभावो यन्त्रसञ्चारस्तन्तुरूपोऽमलच्छविः । सहायः कुण्डलीनाथश्चैतन्यो यन्त्रचालकः ॥१०५॥
खज्योतिर्विमलप्रज्ञः क्षेत्रज्ञः क्षत्रपावनः । शिवधर्मो महाधर्मो धर्माधारधुरन्धरः ॥१०६॥
धर्मज्ञो धर्मसम्बोधो ध्वान्तहा ध्वस्तसंशयः । नरो नारायणो नाथः प्रसिद्धो नरसत्तमः ॥१०७॥
प्रसन्न उत्तमश्लोकः पुण्यश्लोकप्रयोजकः । योगात्मा पञ्चभूतात्मा सर्वात्मा सर्वतोमुखः ॥१०८॥

---

(५३४) मणिपूरकयन्त्रस्थः – मणिपूरचक्रमा विराजमान, (५३५) यन्त्रस्थः – संसारयन्त्रमा जीवका रूपमा विराजमान, (५३६) कैलासः – सामरस्यक्रीडामा विराजमान, (५३७) अनाहतध्वनिः – प्रकृतिसिद्ध महाध्वनिका रूपमा विराजमान, (५३८) अनाहतः – कसैद्वारा आहत नभई रहनुहुने, (५३९) ध्वनिः – महाशब्द अथवा स्फोट अथवा व्यङ्ग्यार्थका रूपमा रहनुहुने, (५४०) विशुद्धस्थः – विशुद्ध चक्रमा विराजमान, (५४१) ॐकारः – ॐकार वा प्रणवरूपमा रहनुहुने, (५४२) आज्ञाधारः – आज्ञाचक्रका आधार, (५४३) योगवित्तमः – सर्वोत्तम योगवेत्ता परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥१०३॥

(५४४) सहस्रदलमध्यस्थः – सहस्रारचक्रको बीचमा रहनुहुने, (५४५) मध्यस्थः – देवता, दानव र मानवका मध्यस्थ अर्थात् कर्महरूका साक्षी, (५४६) चन्द्रिकाद्रवसंयुतः – सहस्रारचक्रबाट प्रवाहित हुने अमृतधारामा स्नान गर्नुहुने, (५४७) द्रवसंयुतः – प्रकृतिरसमा मज्जन गर्नुहुने, (५४८) अन्तर्निष्ठः – अन्तरात्माको जागरण वा आभ्यन्तर दोषहरूको प्रक्षालनमा निष्ठा राख्नुहुने, (५४९) महायोगी– महायोगीश्वर, (५५०) स्वान्तर्योगः – आफूभित्रै योगलीला गर्नुहुने, (५५१) स्वयंसुखी– आत्माराम परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥१०४॥

(५५२) स्वभावः – आफ्नै भाव वा प्रकृतिमा रमाउनुहुने, (५५३) यन्त्रसञ्चारः – मूलाधार आदि चक्रमा विचरण गर्नुहुने, (५५४) तन्तुरूपः – संसारको तन्तुका रूपमा रहनुहुने, (५५५) अमलच्छविः – निर्मल आत्मदीप्तिद्वारा प्रकाशित, (५५६) सहायः– सबै प्राणीहरूका सहयोगी, (५५७) कुण्डलीनाथः – कुण्डलिनीनाडीका स्वामी, (५५८) चैतन्यः – चेतना र ज्ञानका संवाहक, (५५९) यन्त्रसञ्चालकः – संसारयन्त्रका सञ्चालकः परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥१०५॥

(५६०) खज्योतिः – शून्यमा प्रकाशमय भई रहनुहुने, (५६१) विमलप्रज्ञः – निर्मल अध्यात्मप्रज्ञाको आलोक फैलाउनुहुने, (५६२) क्षेत्रज्ञः – प्रकृतिभन्दा पर रहनुभएका तर प्रकृतिको रहस्यबोध गर्ने परमात्मा, (५६३) क्षेत्रपावनः – प्रकृति र प्रकृतिभित्रका सबै तत्त्वलाई पवित्र तुल्याउनुहुने, (५६४) शिवधर्मः – कल्याणकारी धर्मका स्तम्भ, (५६५) महाधर्मः – योगद्वारा आत्मदर्शन गराउने महाधर्मका नायक, (५६६) धर्माधारधुरन्धरः – धर्मका आधार हरूलाई अड्याउने धुरी खाँबोका रूपमा रहनुहुने, (५६७) धर्माधारः – धर्मका आधार, (५६८) धुरन्धरः – संसारको भार धारण गर्नुहुने परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥१०६॥

(५६९) धर्मज्ञः – धर्मतत्त्वका ज्ञाता, (५७०) धर्मसम्बोधः – धर्मको सम्यक् बोध गराउनुहुने, (५७१) ध्वान्तहा– अन्धकार नाश गर्नुहुने, (५७२) ध्वस्तसंशयः – जिज्ञासुका सन्देह निराकरण गर्नुहुने, (५७३) नरः – नारायण मुनिका सहयोगी नर जो कृष्णका सहयोगी अर्जुनका रूपमा क्रियाशील थिए, तिनै अर्जुनका रूपमा रहनुभएका, (५७४) नारायणः – वद्रीनाथमा तपस्या गर्ने नारायणमुनिका रूपमा रहनुभएका, (५७५) नाथः – नाथ सम्प्रदायकका प्रवर्तक आदिनाथ सदाशिव, (५७६) प्रसिद्धः – युग युगमा परोपकारी देवताका रूपमा प्रसिद्ध भगवान् नीलकण्ठ, (५७७) नरसत्तमः – उत्तम नर, जुन आफ्ना विशिष्ट योगदानका कारण महापुरुषका रूपमा विख्यात हुन्छन्, तिनै महापुरुषका रूपमा रहनुहुने परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥१०७॥

(५७८) प्रसन्नः – प्रसादगुणले सम्पन्न, (५७९) उत्तमश्लोकः – उत्तमकीर्तिसम्पन्न, (५८०) पुण्यश्लोकप्रयोजकः – पुण्यमय कीर्तिका सूत्रधार, (५८१) पुण्यप्रयोजकः – पुण्यकर्मका प्रवर्तक, (५८२) श्लोकप्रयोजकः – कीर्तिका प्रवर्तक, (५८३) योगात्मा– योगमय विग्रहले शोभित, (५८४) पञ्चभूतात्मा– पञ्चमहाभूतका आत्मतत्त्व, (५८५) सर्वात्मा– सबैका आत्मा, (५८७) सर्वतोमुखः – सर्वव्यापक परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥१०८॥

परमः परमैश्वर्यः प्रमाथी प्रमथाधिपः। प्रदीपो निर्मलः प्रौढः प्रभवः पार्वतीपतिः ॥१०९॥
पावकेःप्रभवो भव्यः पावकाक्षो वरप्रदः। फणिबद्धजटाजूटः फणिहारविभूषितः ॥११०॥
फणियज्ञोपवीती च फणीन्द्रमण्डलासनः। अहिर्बुध्न्यो महायज्ञः सर्वयज्ञफलप्रदः ॥१११॥
ज्ञानज्ञो ज्ञानवैराग्यमूलो मोक्षफलो महान्। अबद्धः कर्मबन्धानां मुक्तोऽबद्धो बहुश्रुतः ॥११२॥
स्वयंश्रुतः स्वयंबोधः स्वयम्भूः स्वयमात्मवित्। ब्रह्मविद् ब्रह्मसम्पूर्णो ब्रह्मात्मा ब्रह्मसम्भवः ॥११३॥
ब्रह्मादिः सूरविज्ञानपरो ब्रह्मविदांवरः। सताङ्गतिर्भूतपतिर्भूतोत्पत्तिलयङ्करः ॥११४॥

---

(५८६) परमः – परमतत्त्व, (५८७) परमैश्वर्यः – सर्वोत्तम ऐश्वर्यका स्वामी, (५८८) प्रमाथी– दुष्टहरूको दमन गर्नुहुने, (५८९) प्रमथाधिपः – प्रथम गणका स्वामी, (५९०) प्रदीपः – संसारका दीपक, (५९१) निर्मलः – स्वच्छात्मा, (५९२) प्रौढः – पूर्ण विकसित आत्माले देदीप्यमान, (५९३) प्रभवः – विश्वब्रह्माण्डका निर्माता, (५९४) पार्वतीपतिः – गौरीपति परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥१०९॥

(५९५) पावकेः प्रभवः – कुमारका जन्मदाता, (५९६) भव्यः – कल्याणकारी, (५९७) पावकाक्षः – अग्निलाई तृतीय नयनका रूपमा धारण गर्नुहुने, (५९८) वरप्रदः – भक्तहरूलाई वर दिनुहुने, (५९९) फणिबद्धजटाजूटः – नागबन्धनद्वारा जटाजूट कस्नुभएका, (६००) फणिहारविभूषित– सर्पको माला धारण गर्नुहुने परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥११०॥

(६०१) फणियज्ञोपवीती– सर्पलाई यज्ञोपवीतका रूपमा धारण गर्नुहुने, (६०२) फणीन्द्रमण्डलासनः – सर्पराज शेषलाई आसन बनाउनुहुने, (६०३) अहिर्बुध्न्यः – सूर्यका रूपमा रहनुहुने, (६०४) महायज्ञः – पाँच महायज्ञ वा अश्वमेध आदि महायज्ञका रूपमा रहनुभएका, (६०५) सर्वयज्ञफलप्रदः – सम्पूर्ण यज्ञका फल प्रदान गर्नुहुने, (६०६) सर्वफलप्रदः – भक्तहरूलाई सबै किसिमका फल दिनुहुने परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥१११॥

(६०७) ज्ञानज्ञः – "म सुखपूर्वक निदाएँ केही पनि थाहा पाइनँ" भन्ने वाक्यमा थाहा पाइनँ भनिएको छ तर सुखपूर्वक निदाएँ भनी सुखनिद्रा थाहा पाएको तथ्य भने निरूपण गरिएको छ, यस वाक्यमा सुखपूर्वक निदाएको गुप्त ज्ञान र ज्ञाता दुबै प्रतीत हुन्छ। त्यस्तो ज्ञानका ज्ञाता सदाशिव, (६०८) ज्ञानवैराग्यमूलः – ज्ञान र वैराग्यका मुहान, (६०९) ज्ञानमूलः – ज्ञानका अजस्र स्रोत, (६१०) वैराग्यमूलः – वैराग्यका अजस्र स्रोत, (६११) मोक्षफलः – साधकलाई मोक्षरूप फल प्रदान गर्नुहुने, (६१२) महान्– विराट पुरुष, (६१३) कर्मबन्धानाम् अबद्धः – कर्मको बन्धनले नबाँधिनुभएका, (६१४) मुक्तः – संसारमा फैलिएको मायाको पाशबाट उन्मुक्त, (६१५) अबद्धः – मायामय संसारमा प्रकट भएर अनेकौँ लीला गर्नुभए पनि मायाद्वारा नबाँधिनुहुने, (६१६) बहुश्रुतः – समग्र वाङ्मयका ज्ञाता परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥११२॥

(६१७) स्वयंश्रुतः – आफ्नै आत्मशक्तिबाट सकल वाङ्मय धारण गर्नुहुने, (६१८) स्वयंबोधः – आफै सकल वाङ्मयको बोध गर्नुहुने, (६१९) स्वयंभूः – आफै संसारमा विभिन्न रूपमा प्रकट हुनुहुने, (६२०) स्वयमात्मवित्– आफै आत्मतत्त्वको रहस्य बोध गर्नुहुने, (६२१) ब्रह्मविद्– ब्रह्मतत्त्वको रहस्य बोध गर्नुहुने, (६२२) ब्रह्मसम्पूर्णः – पूर्ण ब्रह्मका रूपमा प्रतिष्ठित, (६२३) ब्रह्मात्मा– ब्रह्मतत्त्वलाई आत्मतत्त्वका रूपमा धारण गर्नुहुने, (६२४) ब्रह्मसम्भवः – ब्रह्मजीबाट रुद्रका रूपमा अवतीर्ण हुनुभएका परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥११३॥

(६२५) ब्रह्मादिः – सृष्टिकर्ता ब्रह्माजीका पनि रचयिता, (६२६) सूरविज्ञानपरः– सूर्यविज्ञानमा तत्पर, (६२७) ब्रह्मविदांवरः – ब्रह्मज्ञानीहरूमा श्रेष्ठ, (६२८) सतांगतिः – सज्जनहरूका आश्रय, (६२९) भूतपतिः – प्राणीहरूका स्वामी, (६३०) भूतोत्पत्तिलयंकरः – प्राणीहरूको सृष्टि र संहार गर्नुहुने, (६३१) भूतोत्पत्तिकरः – प्राणीहरूको रचना गर्नुहुने, (६३२) भूतलयङ्करः – प्राणीहरूको विलय गराउनुहुने परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥११४॥

अनल्पज्ञानवैराग्यो भवानीशो भयङ्करः । अद्वैतो निर्मितद्वैतोऽद्वैतस्थितिरुदारधीः ॥११५॥
षड्गुणैश्वर्यसम्पन्नो भगवान् भवभञ्जनः । मन्त्रज्ञो मण्डलोद्धारो मङ्गलायतनोऽमलः ॥११६॥
यन्त्रमन्त्रसमारूढो मन्त्रराजो महाव्रती । विन्दुनादसमाक्रान्तो मकारो मन्त्रसद्गुरुः ॥११७॥
मकारप्रथमो मन्त्रो महार्थपरमागमः । व्योमाकारो जलाक्रान्तः सूर्यमूर्त्तिर्महाकृतिः ॥११८॥
चन्द्रमूर्तिर्महामूर्तिर्वह्निमूर्तिः कलाकृतिः । वायुमूर्तिर्धरामूर्तिरष्टमूर्तिः स्वयन्तनुः ॥११९॥

---

(६३३) अनल्पज्ञानवैराग्यः – असीमित ज्ञान र वैराग्यका स्वामी, (६३४) अनल्पज्ञानः – असीमित ज्ञानका भण्डार, (६३५) अनल्पवैराग्यः – प्रभूत वैराग्यसम्पन्न, (६३६) भवानीशः – भवानीपति, (६३७) भयङ्करः – दुर्जनका लागि भयङ्कर, (६३८) अद्वैतः – अद्वैतवादी, (६३९) निर्मितद्वैतः – आफ्नै इच्छाले अर्थात् "एकोऽहं बहुस्याम्" भन्ने इच्छाले द्वैतावस्थामा रहनुहुने, (६४०) अद्वैतस्थितिः – वास्तविकरूपमा परिपूर्ण एक ब्रह्मका रूपमा रहनुहुने, (६४१) उदारधीः – उदार बुद्धिसम्पन्न परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥११५॥

(६४२) षड्गुणैश्वर्यसम्पन्नः – सकल ऐश्वर्य, धर्म, यश, श्री, ज्ञान र विज्ञानले सम्पन्न, (६४३) भगवान्– ऐश्वर्यवान्, (६४४) भवभञ्जनः – आवागमनको चक्र चुँडाल्नुहुने, (६४५) मन्त्रज्ञः – वैदिक एवं तान्त्रिक मन्त्रहरूका ज्ञाता अथवा राज्यसञ्चालनमा आवश्यक मन्त्रणाका ज्ञाता, (६४६) मण्डलोद्धारः – कुलतन्त्रमा रही कुलीन समाजको उद्धार गर्नुहुने, (६४७) मङ्गलायतनः – मङ्गलका आवास, (६४८) अमलः – निर्मलात्मा परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥११६॥

(६४९) यन्त्रमन्त्रसमारूढः – यन्त्र र मन्त्रमा सवार भई लोकोपकार गर्नुहुने, (६५०) यन्त्रसमारूढः – तन्त्रशास्त्रीय पद्धतिबाट तयार गरिने यन्त्रमा विन्दुरूपमा विराजमान हुनुहुने अथवा संसारचक्रमा प्रकट भई लीला गर्नुहुने, (६५१) मन्त्रसमारूढः – मन्त्रहरूमा प्रणव र प्राणतत्त्वका रूपमा रहनुहुने, (६५२) मन्त्रराजः – सर्वोत्तम मन्त्रका रूपमा विराजमान, (६५३) महाव्रती – संसारको सृष्टि, पालन र संहारको महाव्रत पालन गर्नुहुने, (६५४) विन्दुनादसमाक्रान्तः – शून्य र नाद (ध्वनि) मा आरूढ, (६५५) विन्दुसमाक्रान्तः – विन्दु अर्थात् ब्रह्ममा आरूढ, (६५६) नादसमाक्रान्तः – ॐकार ध्वनिमा समाहित हुनुहुने, (६५७) मकारः – मङ्गलका रूपमा विराजमान अथवा प्रणवतत्त्वको अन्तिम अक्षर मकारका रूपमा विराजमान, (६५८) मन्त्रसद्गुरुः – संसारलाई प्रणवको उपदेश गर्ने उत्तम गुरु परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥११७॥

(६५९) मकारप्रथमः – मङ्गलकर्मलाई सर्वोपरि महत्त्व दिनुहुने, (६६०) मन्त्रः – बीजमन्त्र वा मन्त्रणाका रूपमा व्यक्त हुनुहुने, (६६१) महार्थपरमागमः – धर्म, अर्थ, काम एवं मोक्षरूप महापुरुषार्थको प्रवर्तन गर्ने उद्देश्यले अनेक रूप लिएर संसारमा प्रकट हुनुहुने, (६६२) व्योमाकारः – शून्याकारमा विराजमान, (६६३) जलाक्रान्तः – जलरूप लिएर अथवा जडरूप लिएर विचरण गर्नुहुने, (६६४) सूर्यमूर्तिः – सूर्यका रूपमा रही जगत्लाई प्रकाशित गर्नुहुने, (६६५) महाकृतिः – विशाल ब्रह्माण्डको आकार लिनुहुने अथवा संसार सञ्चालनरूप महान् कार्य गर्नुहुने परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥११८॥

(६६६) चन्द्रमूर्तिः – चन्द्रमाका रूपमा प्रकट भई जगत्लाई आह्लादित गर्नुहुने, (६६७) महामूर्तिः – अतुलनीय आकार प्रकारले सुहाउनुभएका, (६६८) वह्निमूर्तिः– अग्निरूपमा ज्वालामालासहित प्रकट हुनुहुने, (६६९) कलाकृतिः – संसारलाई सुन्दर तुल्याउने अनेक कलाका रूपमा प्रतिबिम्बित हुनुहुने, (६७०) वायुमूर्तिः – पवन वा हावाको रूप लिएर संसारलाई जीवन दिनुहुने, (६७१) धरामूर्तिः – पृथिवीको मूर्ति लिएर स्थावर जङ्गमका आधार बन्नुहुने, (६७२) अष्टमूर्तिः – सूर्य, चन्द्र, पृथिवी, जल, आकाश, वायु, अग्नि र यजमान गरी ८ मूर्तिका रूपमा रहनुहुने, (६७३) स्वयन्तनुः – आफैँ आफूलाई शरीरधारीका रूपमा प्रकट गराउनुहुने परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥११९॥

हेतुः समस्ततत्त्वानामगम्योऽलौकिकप्रियः । इच्छामूर्तिर्महातत्त्वमप्रमेयः पृथग्विधिः ॥१२०॥
एक एव त्रिधा भिन्न एकोऽप्येकादशाकृतिः । एक एवाहतैश्वर्य एक एव जगन्मयः ॥१२१॥
प्रपञ्चचतुरोऽमूर्तिर्लिङ्गमूर्तिर्मनोमयः । ब्रह्मैकविश्वविज्ञानचतुरः प्रकृतेः परः ॥१२२॥
अतिसूक्ष्मगतिर्गूढो गूढात्मा गूढदर्शनः । गूढज्ञानो गूढबीजो गुह्येशो गुह्यकप्रियः ॥१२३॥
सिद्धराजः सिद्धसेव्यः सिद्धाध्वप्रतिपादकः । सिद्धविद्याधराध्यक्षो यक्षगन्धर्वरक्षकः ॥१२४॥
सिद्धयोगीश्वराराध्यः सिद्धसिद्धान्तपालकः । स्थिरधन्वाऽक्षयो धीरो वह्निरेता विभूतिभृत् ॥१२५॥

---

(६७४) हेतुः समस्ततत्त्वानाम्– सम्पूर्ण तत्त्वहरूका उत्पत्तिका कारण, (६७५) अगम्यः – सबै जीवहरूद्वारा अगम्य भई परब्रह्मरूप विराजमान, (६७६) अलौकिकप्रियः – अलौकिक घटना घटाउन मन पराउनुहुने, अलौकिक आत्मामा रमण गर्ने काम रुचाउनुहुने, (६७७) इच्छामूर्तिः – इच्छा हुँदा जगत्को रूप धारण गर्नुहुने, (६७८) महातत्त्वम्– संसारले प्राप्तिको लक्ष्यका रूपमा निर्धारण गरिनुभएका महान् ब्रह्मतत्त्व, (६७९) अप्रमेयः – प्रमाताको प्रमा (बुद्धि) द्वारा इयत्ता र यावत्ताको ज्ञान गर्न नसकिने दिव्य, भव्य र चिदानन्दमयरूपमा विराजमान, (६८०) पृथग्विधिः – संसारको विधि, पद्धतिभन्दा छुट्टै विधि पद्धति अनुसार लीला गर्नुहुने लीलानायक परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥१२०॥

(६८१) एक एव द्विधाभिन्नः – प्रकृति र पुरुष गरी दुई रूपमा देखिनुहुने भएतापनि वास्तवमा ब्रह्मरूपमा एउटै भई रहनुहुने, (६८२) एकोऽप्येकादशाकृतिः – एउटै सदाशिवका रूपमा रहनु भए तापनि कार्यवशात् ११ रुद्रका रूपमा परिणत हुनुहुने, (६८३) एक एवाहतैश्वर्यः – अखण्ड ऐश्वर्यका स्वामी एउटै परमात्मा, (६८४) एक एव जगन्मयः – विशाल ब्रह्माण्डको रूप धारण गर्नुहुने एउटै सदाशिव परमात्मा परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥१२१॥

(६८५) प्रपञ्चचतुरः – ब्रह्मरूपमा रहे पनि महामायाको सहयोगमा संसारप्रपञ्चको रचना गर्न कुशल, (६८६) अमूर्तिः – ब्रह्मरूपमा रहनुहुँदा नामरूपभिन्न सच्चिदानन्दस्वरूप, (६८७) लिङ्गमूर्तिः – संसारको कल्याणका लागि ज्योतिर्लिङ्ग र लिङ्गका रूपमा प्रकट हुनुहुने, (६८८) मनोमयः – प्रत्येक प्राणीमा मनका रूपमा रहनुहुने, (६८९) ब्रह्मैकः – ब्रह्मरूपमा अद्वितीय भई विराजमान, (६९०) विश्वः – ब्रह्माण्डरूपमा परिणत, (६९१) विज्ञानचतुरः – ज्ञानको अनुभव गराउने विज्ञानको चातुर्यका रूपमा वर्तमान, (६९२) प्रकृतेः परः – प्रकृतिभन्दा माथि रहनुहुने परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥१२२॥

(६९३) अतिसूक्ष्मगतिः – अत्यन्त सूक्ष्मरूपमा रहनुहुने, (६९४) गूढः– विश्वप्रपञ्चभित्र पनि गुप्तरूपमा रहनुहुने, (६९५) गूढात्मा– प्रत्येक प्राणीमा प्रत्यगात्माका रूपमा निगूढ भई रहनुहुने, (६९६) गूढदर्शनः – अधिकारी सुपात्र भक्तलाई गुप्तरूपमा दर्शन दिनुहुने, (६९७) गूढज्ञानः – गुप्त रहस्यको ज्ञान दिनुहुने, (६९८) गूढबीजः – संसारबीजलाई गुप्त राख्नुहुने, (६९९) गुह्येशः – गुप्त रहस्यका स्वायी वा गुह्येश्वरी भगवतीका स्वामी, (७००) गुह्यकप्रियः – यक्षेश्वर कुबेरका मित्र परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥१२३॥

(७०१) सिद्धराजः– सिद्धहरूका सम्राट्, (७०२) सिद्धसेव्यः – सिद्धहरूद्वारा सेवनीय, (७०३) सिद्धाध्वप्रतिपादकः– सिद्धहरूलाई आत्मप्राप्तिको मार्गदर्शन गर्नुहुने, (७०४) सिद्धविद्याधराध्यक्षः – सिद्धगण र विद्याधरगणका स्वामी, (७०५) यक्षगन्धर्वरक्षकः – यक्ष र गन्धर्वहरूका रक्षक परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥१२४॥

(७०६) सिद्धयोगीश्वराराध्यः– सिद्ध योगीश्वरहरूद्वारा आराधनीय, (७०७) सिद्धसिद्धान्तपालकः – सिद्ध योगीश्वरहरूका हठयोग र राजयोगका सिद्धान्तहरूको रक्षा गर्नुहुने, (७०८) स्थिरधन्वा– रामबाणको स्थिर धनुका रूपमा विराजमान, (७०९) अक्षयः – अविनाशी, (७१०) धीरः – धैर्यसागर, (७११) वह्निरेताः – अग्निलाई वीर्यका रूपमा धारण गर्नुहुने अथवा अग्निद्वारा जसको वीर्य धारण गरिएको थियो र पछि त्यही वीर्य कुमारका रूपमा प्रकट भयो, (७१२) विभूतिभृत्– भस्म धारण गर्नुहुने अथवा संसारको विभूति ऐश्वर्य धारण गर्नुहुने परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥१२५॥

योगिराजः सुखस्पर्शी समदर्शी पुरान्तकः । अजगुर्गगनारम्भो ब्रह्मस्तम्भः सुरोत्तमः ॥१२६॥
सद्विद्वान् निगमस्तारः संसारार्णवतारकः । सत्तीर्थः सर्वभूतेषु सर्वभूतसुखावहः ॥१२७॥
मुनिप्रियो मुनिध्येयो मुनीन्द्रो मुनिलक्षणः । आनन्दभरितो भर्गः शरण्यः सुखनन्दितः ॥१२८॥
ॐ नमोऽक्षरबीजस्थः कूटस्थः कूटविभ्रमः । उत्तरः सुन्दरो योग्यः क्षराक्षरपरं नमः ॥१२९॥

श्रीशिव उवाच –

प्रपञ्चपटलव्यक्तं मिथ्यात्मानं मया सखे । परसंवित्तिविज्ञेयं दर्शितं परमार्थतः ॥१३०॥
तथा शिवकलाशान्तं तमात्मानमुपासितुम् । सहस्रनामव्याजेन ब्रह्मविद्योपदेशिता ॥१३१॥
घोरसंसारकान्तारबद्धानां कर्मशृङ्खलैः । नराणां मोचयित्रीह विद्यते नेदृशी परा ॥१३२॥
सहस्रनामसद्विद्या शिवस्य परमात्मनः । योऽनुष्ठायाशीतिकल्पं शिवकल्पो भविष्यति ॥१३३॥
मयि प्रेम समाधाय त्रिसन्ध्यमनुतिष्ठति । विंशतिः सम्पदः सर्वास्तस्यागारेष्वकल्पिताः ॥१३४॥

---

(७१३) योगिराजः – योगीहरूमा श्रेष्ठ महायोगी, (७१४) सुखस्पर्शी– निरन्तर आत्मसुखको अनुभूति गर्नुहुने, (७१५) समदर्शी– सर्वत्र समान भाव राख्नुहुने, (७१६) पुरान्तकः – त्रिपुरविनाशक, (७१७) अजगुः – ब्रह्माजीको ज्ञानमूर्ति वेदलाई धारण गर्नुहुने, (७१८) गगनारम्भः – सर्वप्रथम शून्याकाशका रूपमा प्रकट भई जगत्को सृष्टि गर्नुहुने, (७१९) ब्रह्मस्तम्भः – परब्रह्मरूप ज्योतिर्लिङ्गको स्तम्भ बनेर आकाश एवं पातालमा व्याप्त हुनुहुने, (७२०) सुरोत्तमः – उत्तम देवता परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥१२६॥

(७२१) सद्विद्वान्– आत्मज्ञानी विद्वान्का रूपमा रहनुहुने, (७२२) निगमः – वेदविद्याका रूपमा विराजमान, (७२३) तारः – ॐकारका रूपमा रही जगत्लाई तार्नुहुने, (७२४) संसारार्णवतारकः – भक्तलाई संसारसागरबाट पार लगाउनुहुने, (७२५) सत्तीर्थः सर्वभूतेषु – सम्पूर्ण प्राणीहरूका लागि उत्तम तीर्थका रूपमा विराजमान, (७२६) सर्वभूतसुखावहः – सबै प्राणीहरूमा सुखसञ्चार गराउनुहुने परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥१२७॥

(७२७) मुनिप्रियः– मननशील मुनिहरूका प्यारा, (७२८) मुनिध्येयः – मुनिहरूद्वारा ध्यान गरिने परमात्मा, (७२९) मुनीन्द्रः – मुनिराज, (७३०) मुनिलक्षणः – मुनिहरूका लक्षणले युक्त, (७३१) आनन्दभरितः – आनन्दपरिपूर्ण, (७३२) भर्गः – ज्योतिर्मय, (७३३) शरण्यः – शरणदाता, (७३४) सुखनन्दितः – सत्कर्मद्वारा सुख, शान्ति प्राप्त गर्ने भक्तहरूलाई देखेर आनन्दित हुनुहुने, (७३५) ॐ नमोऽक्षरबीजस्थः – ॐ नमः यी अक्षरहरूको बीजरूपमा रहनुहुने, (७३६) कूटस्थः – प्रत्यगात्माका रूपमा सबै प्राणीमा लुकेर रहनुहुने, (७३७) कूटविभ्रमः – आफू सर्वत्र सर्वव्यापक भई रहनुहुने भए तापनि अरूलाई कूटरूपमा रहेको भ्रान्ति गराउनुहुने, (७३८) उत्तरः – सर्वोत्तम, (७३९) सुन्दरः – सर्वाधिक रमणीयरूपले सुहाउनुभएका, (७४०) योग्यः – योगद्वारा प्राप्तव्य, (७४१) क्षराक्षरपरः – क्षर र अक्षरभन्दा पर रहनुभएका, (७४२) नमः – नमः बीजका रूपमा रहनुहुने हजुरलाई नमस्कार गर्दछु । परमेश्वर सदाशिवलाई प्रणाम गर्दछु ॥१२८–१२९॥

भगवान् शिवले भन्नुभयो– हे मित्रवर ! मिथ्यारूप भए पनि परा संवित्ति अर्थात् सर्वोत्तम ज्ञानद्वारा जान्न सकिने प्रपञ्चसमूहका रूपमा आविर्भूत प्रकृतिको पारमार्थिक स्वरूपले मैले बताएँ । शिवकला प्राप्त गरी निस्तरङ्गरूपमा विराजमान परमात्माको उपासनाका लागि सहस्रनामको निहुँले ब्रह्मविद्याको उपदेश गरें । कर्मका जञ्जीरद्वारा डरलाग्दो संसारमा बाँधिएका मानिसहरूलाई संसारबाट मुक्त गराउने यो ब्रह्मविद्यासमान अरू कुनै विद्या छैन । जसले परमात्मा शिवको यस नाममालारूप उत्तमविद्याको ८० पटक आवृत्ति गर्दछ त्यो मानिस शिवसमान बन्दछ । जसले म शिवमाथि भक्ति गरी प्रतिदिन तीनै सन्ध्यामा बीस–बीस पटक यस नाममालाको पाठ गर्दछ त्यस व्यक्तिको घरमा अकल्पनीय सम्पत्ति प्राप्त हुन्छ ॥१३०–१३४॥

सप्तद्वीपधराराज्यं स्वाराज्यं सुरसेवया। महामोक्षफलस्यास्य प्रतारणमिदं फलम् ॥१३५॥
महामन्त्रस्वरूपाणां नाम्नां दशशती मम। वह्निज्वालेन च स्वर्णं नरं निर्मलयत्यघात् ॥१३६॥
सहस्रनाममन्त्रेऽस्मिन् नेकोच्चारणतः पृथक्। स्नातो भवति जाह्नव्यां दिव्यदृष्टिश्चरेद्भुवि ॥१३७॥
रम्यारामाङ्गसङ्गेषु विपुलानेकसम्पदः। उपभोगेषु सक्तोऽपि जीवन्मुक्तश्च जायते ॥१३८॥
दधानः शाम्भवीं भूषां मच्चित्तो मत्परायणः। जपत्यनुदिनं स्नातः क्रीडते स मया सह ॥१३९॥
इयं नामावली प्रौढा पापौघदहनक्षमा। प्राणिनां कृपया युक्ता त्रैलोक्यगुरुवत्स्थिता ॥१४०॥
महाप्रदोषे मल्लिङ्गं स्पृशञ्जपति यः शुचिः। मम स्वरूपतामेत्य पश्चात् सायुज्यमेष्यति ॥१४१॥
कालो बिभेति तद्देहं प्रवेष्टुं समयं विना। श्रीमानव्याहतो जीवो योगीचात्मतनुं त्यजेत् ॥१४२॥
इमाः प्रचुरविज्ञानकलिता नाममालिकाः। श्रुत्वा स्वामिकुबेराद्याः प्रत्याजगृहिरे शिवम् ॥१४३॥

योगिन ऊचुः –

नमः समाधिसान्द्राय परमानन्दहेतवे। अनेकतत्त्वसम्मर्दमायासागरसेतवे ॥१४४॥
मूलप्रकृतिनाथाय शिवाय परमात्मने। प्रसन्नविमलज्योतिःस्वरूपाय महात्मने ॥१४५॥
परं ब्रह्म परं व्योम परं सद्म परः शिवः। परतत्त्वाय कारुण्यसंसारोग्रार्तिहारिणे ॥१४६॥

---

महामोक्षरूप फल प्रदान गर्ने यस सहस्रनामको पाठबाट देवताहरूको भक्ति गरी प्राप्त हुने सात द्वीपले परिपूर्ण पृथिवीराज्य वा स्वराज्यको प्राप्तिलाई पनि आत्मालाई प्रपञ्चमा फँसाउने वञ्चनाका रूपमा बुझ्ने शक्ति प्राप्त हुन्छ। महामन्त्रस्वरूप मेरा नामहरूको एक हजार संख्याले अग्निको ज्वालाले सुवर्णलाई शुद्ध बनाएझैं मानिसलाई पापबाट मुक्त र निर्मल तुल्याउँछ। यस सहस्रनाम महामन्त्रका १००० मन्त्रमध्ये एउटा मात्र मन्त्रको छुट्टै उच्चारण गर्नाले गङ्गास्नान गरेको फल प्राप्त हुन्छ र त्यो मानिस दिव्यदृष्टि प्राप्त गरी पृथिवीमा विचरण गर्दछ ॥१३५–१३७॥

यस दिव्य शिवसहस्रनाम नाममालाको दिव्य जप वा पाठ गर्ने मानिस रूपवती रमणीहरूका साथ भोगविलासमा नित्य निरत भए पनि र विपुल एवं अनेक श्रीसम्पत्तिको उपयोगमा आसक्त भए पनि सहस्रनाम पाठको प्रतापले जीवन्मुक्त बन्दछ ।शाम्भवी वेषभूषा धारण गरी म सदाशिव शम्भुमा मन लगाएर मलाई नै परम आश्रय सम्झी मेरै भजनमा तत्पर भएको भक्तले दिन्दिनै प्रातःकालमा उठी नुहाएर यस सहस्रनाम महामन्त्रमालाको जप गर्दछ भने त्यस मक्तले मेरो धाममा गई मसँग क्रीडा गर्ने सौभाग्य प्राप्त गर्दछ। यो शक्तिशाली एक हजार शिवनामको मन्त्रमाला पापको पुञ्जलाई डढाउन र प्राणीहरूमाथि कृपामृत बर्साउन समर्थ छ। त्यसैले यो नाममाला त्रिलोकीकै गुरुका रूपमा विराजमान छ ॥१३८–१४०॥

महाप्रदोष अर्थात् मध्यरात्रिमा जसले पवित्र भएर मेरो लिङ्ग स्पर्श गर्दै यस नाममालाको जप गर्दछ त्यो साधक मेरै स्वरूप प्राप्त गरी अन्तमा मैमा एकाकार हुन्छ। मेरो नाममाला महामन्त्रको नित्य जप गर्ने मानिसलाई देखेर मृत्यु पनि भयभीत हुन्छ र समयभन्दा पहिले त्यस भक्तमाथि आक्रमण गर्न असमर्थ हुन्छ। नित्य निरन्तर नाममालाको अभ्यास गर्ने जीव वा योगीले श्रीसम्पन्न भई निर्विघ्नपूर्वक पूरा आयु बाँचेर शरीरत्याग गर्दछ ॥१४२॥ माथि बताइएका प्रचुर शिवविज्ञानले सम्पन्न नाममन्त्रहरू सुनेर योगीहरूसहित कुमार स्वामी र कुवेर आदि शिवभक्तहरू भगवान् शिवको सामुमा गई उहाँको स्तुति गर्न लागे ॥१४१–१४३॥

योगीहरू भन्दछन्– गहनसमाधिमा डुब्नुहुने, परम आनन्दका कारण प्रकृति र विकृतिका कारक अनेक तत्त्वहरूको भीडभाडले भरिएको मायाको सागर संसारबाट पार लगाउने सेतु (पुल) का रूपमा रहनुभएका हे सदाशिव ! हजुरलाई नमस्कार गर्दछौँ। मूलप्रकृति मायाका स्वामी प्रसन्न र निर्मल ज्योतिको स्वरूपमा रहनुहुने महान् आत्मा परमात्मा शिवलाई नमस्कार गर्दछौँ। हे सदाशिव ! हजुर परब्रह्म हुनुहुन्छ, परम शून्य हुनुहुन्छ, परम धाम हुनुहुन्छ, सबैभन्दा पर परमतत्त्वका रूपमा रहनुहुने कल्याणकारी देवता सदाशिव हुनुहुन्छ। करुणापूर्वक संसारको डरलाग्दो व्यथा निवारण गर्नुहुने परमतत्त्व सदाशिवलाई प्रणाम गर्दछौँ ॥१४४–१४६॥

शिवायाऽखिलसद्भक्तमनःसङ्कल्पशाखिने। निदधामि महादेव यस्मिन् कारुण्यवारिधे ॥१४७॥
कृपाकटाक्षमव्यक्तं कस्त्वां वेत्ति यथार्थतः। नमो विश्वेशबोध्याय ब्रह्मणेऽमितवर्चसे ॥१४८॥
नमः संसारकान्ताय संसारभ्रान्तिहारिणे। नमोऽतिसूक्ष्मतत्त्वाय लिङ्गदेहाय शम्भवे ॥१४९॥
सत्त्वं करोषि ब्रह्माणं स चन्द्रं स च भास्करम्। सुरासुरमयी यस्य वचःशक्तिर्जगन्मयी ॥१५०॥
क्षराक्षरमयं देवं सर्वकालात्मकं शिवम्। अप्यजस्तु न जानाति त्वां वै जानात्यनुग्रहात् ॥१५१॥
मनसामप्यगम्यस्त्वं वचसामपि शङ्कर अतः शिव शिवेशानेत्युच्यते वाग्विकल्पनैः ॥१५२॥
सम्भो महेश्वर बिभर्ति सदा त्रिपुण्ड्रं सद्भस्मना सलिलधौतललाटदेशे।
योऽनुक्षणं शिव शिवेति जपेत्तु शैवं लोकत्रयोपरि सदाशिव ते प्रियोऽस्तु ॥१५३॥

कुमार उवाच

इति ते नाममालायाः पाठं चक्रुः पुनः पुनः। श्रीमृगाधीशप्राप्त्यर्थं विमले वाग्वतीतटे ॥१५४॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे श्रीशिवदिव्यनामसहस्रस्तोत्रपाठे त्र्यशीतितमोऽध्यायः ॥८३॥

---

सकल उत्तम भक्तका मनमा सङ्कल्पलाई कल्पवृक्षले झैं साकार तुल्याउनुहुने सदाशिवलाई हामी प्रणाम गर्दछौं। हे करुणासागर! हजुरले जुन व्यक्तिमाथि थाहा नपाईकन नै कृपाकटाक्षको प्रयोग गर्नुहुन्छ, त्यो हजुरको करुणामय दृष्टिपात त्यस व्यक्तिको कल्याणका लागि हुन्छ। हजुरलाई कसले राम्ररी बुझ्न सक्दछ ? विश्वनाथ शब्दबाट सर्वत्र प्रसिद्ध हुनुभएका, अपरिमित तेजका स्वामी परब्रह्मरूप हजुरलाई नमस्कार गर्दछौं। हामी संसारका प्यारा, संसारको भ्रान्ति निवारण गर्नुहुने, अनिसूक्ष्म तत्त्वका रूपमा रहनुहुने र प्राणमय कोश, मनोमय, विज्ञानमय कोश अर्थात् प्राण, मन र बुद्धिद्वारा निर्मित लिङ्गशरीर धारण गर्नुहुने भगवान् शङ्करलाई नमस्कार गर्दछौं ॥१४७–१४९॥

हे भगवान् शिव! अनिर्वचनीय महिमा भएका हजुरले ब्रह्माजी, सूर्य र चन्द्रजस्ता महिमामय देवस्वरूपहरूको रचना गर्नुहुन्छ। हजुरको वाक्शक्ति देव, दानव आदिमा प्रवृत्त भएर जगत्मा परापश्यन्ती मध्यमा र वैखरीका रूपमा फैलिएको छ। हे सदाशिव! क्षर र अक्षरका रूपमा रहनुहुने, सम्पूर्ण कालमा जगत्का साक्षी भई विराजमान हुनुभएका शिवरूप हजुरलाई ब्रह्माजी पनि जान्नुहुन्न र हजुरको कृपा भएमा मात्र उहाँले जान्न सक्नुहुन्छ। हे शङ्कर! हजुर वचन र मनबाट अगम्य (अप्राप्य) हुनुहुन्छ, त्यसैले वाणीका अनेक नामभेदले हजुरलाई हामी शिव, ईशान इत्यादि नामले सम्बोधन गरी पुकार्दछौं। हे शम्भु! हे महेश्वर! जसले पवित्र जलले पखालिएको आफ्नो निधारमा उत्तम भस्म प्रयोग गरी त्रिपुण्ड्र तिलक धारण गर्दछ र हे सदाशिव जसले प्रतिक्षण हे शिव! हे शिव! इत्यादि मन्त्रमय शिवका नामोच्चारण गर्दछ, त्यो भक्त तीन लोकमाथि रहेर हजुरको प्रीतिपात्र बन्छ ॥१५०–१५३॥

स्वामी कार्तिकेयले भन्नुभयो – हे अगस्त्यमुनि! भगवान् शिवको दर्शन नपाउँदा सा्र पीरमा परेका ब्रह्मा, विष्णु र इन्द्र आदि देवताहरूले मृगपतिका रूपमा मृगस्थलीमा गुप्तरूपमा विहार गर्नुहुने भगवान् शिवको दर्शन पाउनका लागि वाग्वतीनदीको निर्मल तटमा रहेर बारम्बार शिवनाममालाको पाठ गरे ॥१५४॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा शिवसहस्रनामनामक त्रियासियौं अध्याय पूरा भयो।[1]

---

१. विशेष – शिवसहस्रनाम अमोघ शक्तिसम्पन्न छ, सहस्रनाममाला भनिए पनि यसमा लगभग ७५० नामहरू मात्र छन्। समस्त पद विच्छेद गरी नामनिरूपण गर्दा भने सहस्रनाममाला तयार हुन सक्छ। भगवान् शिवको मुखारविन्दबाट प्रकट भएको हुनाले र योगगम्य भएकाले भौतिक पदहरूको दृष्टिबाट हजारको संख्या नपुगे पनि आध्यात्मिक योगचक्षु भएका दिव्य साधकको दृष्टिमा यो परिपूर्ण हुन सक्छ। खण्डित भई छुटेको र टङ्कणमा छुटेको जस्तो पनि नदेखिनाले समस्तपद विच्छेद गरी एक नामलाई अनेक नाममा रूपान्तरण गर्न सकिने हुँदा मैले यस नाममालालाई पूर्ण ठानेको छु। यदि यसलाई सहस्रनाम नभनेर नाममालामात्र भनिन्छ भने पनि यस नाममालाका प्रत्येक मन्त्र अमोघ शक्तिसम्पन्न भएकाले सहस्रनामपाठको फलप्रदान गर्न समर्थ छन् भन्ने मेरो बुझाइ छ।

# चतुरशीतितमोऽध्यायः

## मृगरूपस्य शिवस्योपदेशः

### स्कन्द उवाच

ततः स्तवोत्तमं श्रुत्वा नामसहस्रकम्[1]। सुभक्तिं प्रेक्ष्य तेषाञ्च तुतोष भगवान् विभुः ॥१॥
सर्वलोकोपकाराय तान् समुद्[1क] बोधितुं पुनः। द्योतयन् प्रभयाकाशं भगवानिदमब्रवीत् ॥२॥

### हरिणेश्वर उवाच

भो भो देवा वचो यूयं शृणुत प्रोच्यतेऽधुना। हितार्थञ्चैव सर्वेषां संसारिणां विशेषतः ॥३॥
शृङ्गमात्रेण सन्तुष्टा भवन्तु सुरसत्तमाः। किङ्कार्यं वः शरीरेण हारिणेन पुनर्मम ॥४॥
विहरणे समाप्ते मे मृगरूपेण मत्क्षितौ। प्रबोधितो हि यद्येवं शृणुत भारतीं सुराः ॥५॥
यद्येतत् वपुः सङ्गृह्य[2] संस्थापितं भवेन्मम। चतुष्पादो धृतो[3] धर्मः सर्वो मुक्तिं गमिष्यति ॥६॥
पापिनस्ते[4] विनङ्क्ष्यन्ति रसा पुण्या भविष्यति। तव परिश्रमो यत्नोऽमोघो विधे भविष्यति ॥७॥
मत्कारणानि शृङ्गाणि भवतां करणानि च। एतानि स्थापयिष्यन्तु भवन्तो हि सुरोत्तमाः ॥८॥
संस्थिते विग्रहे लिङ्गे स्थाने चास्मिन्मनोहरे। सुभिक्षं महती वृष्टिर्भविष्यति न संशयः ॥९॥
पुण्यतरेऽत्र मत्क्षेत्रे सर्वदुष्कृतनाशने। यावन्ति भुवि तीर्थानि चाऽऽसमुद्रं सरांसि च ॥१०॥
ममाज्ञयाऽऽगमिष्यन्ति गिरिगह्वरक्षेत्रतः[5]। कोटित्रयार्द्धकोटीनां तीर्थानाञ्च सुरोत्तमाः ॥११॥
स्थानानि च भविष्यन्ति एकैकांशैर्निरन्तरम्। मयि चात्र[6] स्थिते लिङ्गे दीप्तितेजोमयानने ॥१२॥

---

## अध्याय – ८४

### मृगरूपमा रहनुभएका शिवको उपदेश

कार्तिक स्वामीले भन्नुभयो – त्यसपछि तीन किसिमको भक्तिले युक्त भएको देवताहरूको स्तुति एवं उनीहरूले पाठ गरेको नाममाला समेत सुनेर, नमस्कार र भक्ति देखेर भगवान् शङ्कर देवताहरूसित प्रसन्न हुनुभयो। सम्पूर्ण प्राणीहरूको हितका लागि आफ्नो कान्तिले सम्पूर्ण आकाशलाई उज्यालो पार्दै भगवान् शङ्करले तिनीहरूलाई भन्नुभयो ॥१–२॥

हरिणेश्वरले भन्नुभयो – हे देवता हो ! सम्पूर्ण प्राणीको हितका लागि म केही कुरा भन्छु, तिमीहरू सुन। हे देवता हो – तिमीहरू सिङले सन्तुष्ट भइहाल्यौ, हरिणको रूप लिने मेरो शरीरसित तिमीहरूको के प्रयोजन छ ? मृगको रूप लिएर गरेको मेरो विहार समाप्त भइसकेपछि तिमीहरूले यसप्रकार मलाई ब्युँझायौ। अब मैले विहार गरेका स्थानको दर्शन गर्नाले पाइने फल म बताउँछु, सुन। चारखुट्टे मृगको शरीर लिएर मैले धर्मको चार पाउको स्थापना गरेको हुँ। जसले यस रूपको पूजा, ध्यान गर्छन्, ती सबै व्यक्ति मुक्त हुनेछन्। यो ठाउँमा आउनाले मात्र पनि प्राणीहरूको पाप नष्ट हुनेछ, पृथ्वी पवित्र हुनेछिन्। हे ब्रह्मा ! तपाईंको यो परिश्रम निष्फल हुनेछैन ॥३–७॥

हे देवताहरू हो! मसँग सम्बद्ध सिङहरू तपाईंहरूसँग छन्। यी सिङ तपाईंहरूको कल्याण, सुख र समृद्धिका कारण हुनेछन्। यी सिङलाई तपाईंहरूले विभिन्न ठाउँमा स्थापना गर्नुहोस्। मेरो लिङ्ग शरीर यो सुन्दर देशमा स्थापना भएपछि सधैँ महाकाल हुनेछ, लामो वृष्टि हुनेछ, यसमा सन्देह छैन। सम्पूर्ण कुकृत्यलाई नाश गर्ने यो मेरो पुण्य क्षेत्रमा समुद्रसम्म पृथ्वीमण्डलमा जति पनि तीर्थ र तलाउ छन्, ती सबै मेरो आज्ञानुसार पहाडको गुफाबाट आउनेछन्। हे देवता हो ! तेत्तीस करोड देवता र पचास लाख तीर्थहरूले एक–एक अंश लिएर निरन्तर यहाँ बस्नुपर्नेछ। म पनि यसै ठाउँमा ज्योतिर्लिङ्गको रूप लिएर बस्छु ॥८–१२॥

---

१. त्रिविधोक्तं नतिं तदा, इति न.सं.पु.पाठः।
१क. तेभ्यः प्रबोधितुम् इति न.सं.पु.पाठः।
२. यद्येतद्वपुषं गृह्य इति न.सं.पु.पाठः।
३. अखिल इति न.सं.पु.पाठः।
४. ततो लोका इति न.सं.पु.पाठः।
५. गिरिगह्वरसम्भवात् इति न.सं.पु.पाठः।
६. अहञ्चात्र इति न.सं.पु.पाठः।

ज्योतीरूपे मयि क्षेत्रे चास्मिन्नेको ह्रदो भविष्यति। बाणपुत्रो बली दैत्यो ब्रह्मणो वरदर्पितः ॥१३॥
भ्रातृभिः सममत्रैव यावद्रोत्स्यति[७] वाग्वतीम्। नागह्रद इति ख्याते निरुद्धं वाग्वतीजलम् ॥१४॥
स्वच्छदर्पणसङ्काशं पद्मोत्पलविभूषितम्। झषनक्रसमाकीर्णं भीषणं हंससेवितम् ॥१५॥
नानाशैवलसङ्कीर्णं भीषणं मकरादिभिः। तस्मिन्नागह्रदे भीष्मे स्थास्याम्यन्तर्जले चिरम् ॥१६॥
त्रिंशद्वर्षसहस्राणि सर्वलोकैरगोचरः। तपसोग्रेण सार्द्धं वै चात्र वासुकिना मुदा ॥१७॥
सुखं स्थास्याम्यहं देवाः कञ्चित्कालं जलान्तरे। वृष्णिकुलोद्भवो यर्हि विष्णो त्वञ्च भविष्यसि ॥१८॥
स कृष्ण इति विख्यातो दानवान् निहनिष्यति[८]। प्रद्युम्न इति विख्यातः कलौ हि त्वत्सुतो बली ॥१९॥
स हनिष्यति तान् दैत्यान् विपक्षाँश्च दिवौकसाम्। निहते बाणपुत्रे च तदेव पद्मसम्भव ॥२०॥
सेतुं विदार्य कृष्णश्च मोचयिष्यति[९] वाग्वतीम्। नदीरूपा यदा लोके वाग्वती मण्डलं वनम्[१०] ॥२१॥
उत्पश्यामि तदा देव[११] तच्छरीरशिलातनुम्। सुरभिः क्षीरधाराभिः प्रसिञ्चेत्तत्र चिह्निते ॥२२॥
द्रक्ष्यन्ति[१२] मां तदा म्लेच्छाः खनित्वा सैकतं पुनः। मूर्तिं मामपि जानीयु[१३]र्ज्योतिर्लिङ्गोपरि स्थितम् ॥२३॥
यथा प्रागपि देशोऽय[१४] सर्वम्लेच्छैरधिष्ठितः ॥२४॥
गवेष्यन्ति च मां म्लेच्छा अपि धर्मविवर्जिताः[१५]। चम्पकद्रुमछायाभिराच्छादितशरीरकम्[१६] ॥२५॥

---

ज्योतिस्वरूप भएको यस क्षेत्रमा एउटा पोखरी बन्नेछ, ब्रह्माको वरबाट मत्त भएको बाणको छोरो बलिले आफ्ना भाइहरूका साथ यहाँ आएर वाग्वतीमा थुन्नेछ। त्यसपछि रोकिएको वाग्वतीको जल नागह्रद नामले प्रसिद्ध हुनेछ। त्यो तलाउ ऐनाजस्तै सफा, कमलहरूले सुशोभित, माछा र गोहीले भरिएको हुनेछ। डरलाग्दो त्यस तलाउमा प्रशस्त हाँसहरू रहनेछन्। विभिन्न झारहरूले भरिएको त्यो तलाउ गोहीले गर्दा अत्यन्त भीषण हुनेछ। म त्यही डरलाग्दो नागदहको पानीभित्र धेरै समयसम्म बस्नेछु। तीस हजार वर्षसम्म सबैले देख्ने गरी वासुकि नागका साथ कठिन तपस्या गरेर म यस ठाउँमा आनन्दसित बस्नेछु। देवताहरू केही समयसम्म यस पानीभित्र बस्नेछन् ॥१३–१७॥

हे विष्णु ! तपाईं वृष्णिको वंशमा कृष्ण नामले प्रसिद्ध भएर उत्पन्न हुनुहुनेछ र दानवहरूलाई मार्नुहुनेछ, तपाईंको छोरा प्रद्युम्नले कलियुगमा देवताका शत्रु ती सबै दैत्यलाई मार्नेछन्। हे ब्रह्माजी ! बाणसुरलाई मारेपछि बाँध भत्काएर कृष्णले वाग्वती नदीलाई बगाइदिनुहुनेछ अनि वाग्वती नदी भएर बग्नेछिन्। त्यसपछि सम्पूर्ण क्षेत्र जङ्गलमय हुनेछ। हे ब्रह्माजी ! त्यसपछि म शिलामय बनेर उत्पन्न हुनेछु। शिलामय विग्रह भएको ठाउँमा गाईले दूधको धाराले मलाई सेचन गर्नेछिन्। त्यसपछि बालुवामा खनेर म्लेच्छहरूले मेरो खोजी गरी पत्ता लगाउनेछन्। मेरो मूर्ति ज्योतिर्लिङ्गमाथि शिवलिङ्ग रहेको भन्ने ठान। त्यसैगरी पछि–पछि पनि धर्मवर्जित म्लेच्छहरूले मलाई खोज्नेछन्। चाँपको रुखको छायाले छेकिएर केही दिन म लुक्नेछु ॥१८–२५॥

---

७. रुन्धिष्यति च इति न.सं.पु.पाठः।
८. दानवान्स हनिष्यति इति न.सं.पु.पाठः।
९. विमोचिष्यति इति न.सं.पु.पाठः।
१०. वाग्वत्याञ्च नदीभूते वने जाते च मण्डले इति न.सं.पु.पाठः।
११. समुत्पश्यामि विष्णोऽज इति न.सं.पु.पाठः।
१२. पश्यन्ति इति न.सं.पु.पाठः।
१३. मां मूर्तिनं हि जानीयात् इति न.सं.पु.पाठः।
१४. यथा प्राग्भविता देश इति न.सं.पु.पाठः।
१५. ततोऽहमहतैर्म्लेच्छैरपि धर्मविवर्जितै इति न.सं.पु.पाठः।
१६. चम्पकद्रुमछायाभिराच्छादनप्रशोभनम् इति न.सं.पु.पाठः।

तान्निहत्य हरे धातर्यूयं सर्वे महोत्सवैः । करिष्यथ सुखं राज्यमत्रैव च यथा पुरा ॥२६॥
त्रिसहस्रसमान्ते च किरातैर्भुज्यते पुनः । क्षत्रियैस्तान्निहत्याज तद्राज्यञ्च तथा पुनः ॥२७॥
ततो जानपदन्तत्र भविष्यति महत्पुरम् । धर्मनिष्ठाग्रजैः पुण्यं[१७] सर्ववर्णाश्रमैर्युतम् ॥२८॥
धर्मः संस्थाप्यते तत्र ब्राह्मणैः स्वाश्रमाश्रितैः । सम्यक् प्रवृत्तयो भूयो भविष्यन्त्यत्र तत्कलौ ॥२९॥
करिष्यन्ति महत्कीर्त्तिमनेकां मम शासनात् । प्रजाः पुण्यतराः सर्वा धर्मिष्ठाश्च नराधिपाः ॥३०॥
किरातेस्वतिक्रान्तेषु जम्बूद्वीपे जलात्मके[१८] । मत्प्रभावाद्धि मत्क्षेत्रं नोऽत्र स्थानं भविष्यति ॥३१॥
एवं सम्यक् स्थिते[१९] चात्र देशे पौरजने कलौ । तदा मामर्चयिष्यन्ति सर्वलोकाश्च सर्वदा ॥३२॥
भूयोऽहं यैः सकृद् दृष्टो विधिवद् वन्दितस्तवैः । मम लोकं प्रयास्यन्ति मद्यानैर्दग्धकिल्विषाः ॥३३॥
इमं देहं मृगोद्भूतं कूटागारोदरस्थितम् । नमन्ति भक्त्या सम्पूज्य[२०] पशुजन्मविवर्जिताः ॥३४॥
गङ्गाया उत्तरेणाज दक्षिणेनाश्ववक्त्रतः । क्षेत्रं हिमवतः पुण्यं योजनानां शतार्द्धतः ॥३५॥
हिमाद्रितुङ्गशृङ्गाद्या मन्मुखसम्भवा नदी । वाग्वती शिवगङ्गाऽऽर्या तथा ब्रह्मसरस्वती ॥३६॥
गङ्गाशतगुणज्येष्ठा, पवित्रं सलिलं भवेत् । वाग्वत्यां किल मत्क्षेत्रे स्नातो नारायणो भवेत् ॥३७॥
पूर्वेण चन्द्रभागाया अन्तश्चोत्तरतस्तथा । वाग्वतीसलिले स्नातो विष्णो तव पुरं व्रजेत् ॥३८॥
यावत्स्रवन्ति तोयानि हिमाद्रेः सानुशेखरात् । दरीकटकजातानि गङ्गार्णसदृशानि च[२१] ॥३९॥
वाग्वतीजलसंस्नाता महापातकिनोऽपि वा । त्यक्त्वा देहं नरा यान्ति मम लोकं न संशयः ॥४०॥

---

हे ब्रह्मा ! हे विष्णु ! त्यसपछि तिमीहरूले ती सबैलाई मारेर उत्सव मनाउँदै जस्तो अघि थियो, त्यस्तै गरी सुखपूर्वक राज्य चलाउनेछौ ।तीन हजार वर्ष बितेपछि फेरि त्यहाँ किरातहरूले राज्य गर्नेछन् । हे ब्रह्मा ! किरातहरूलाई परास्त गरेर फेरि त्यहाँ क्षत्रियहरूको राज्य हुनेछ । त्यसपछि धेरै मानिसले भरिएको त्यो ठाउँ ठूलो शहर हुनेछ । यो पुण्यक्षेत्र धर्मात्मा, ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र सबैले युक्त भएको हुनेछ । आफ्नो आश्रममा बसेका ब्राह्मणहरूले धर्मको स्थापना गराउनेछन्, कलियुगमा पनि राम्रो किसिमको चालचलन यहाँ हुनेछ । मेरो शासनले गर्दा यहाँका मानिसहरूले अनेकौं कीर्ति प्राप्त गर्नेछन् । सबै प्रजाहरू पुण्यात्मा र राजाहरू धर्मात्मा हुनेछन् । यो सम्पूर्ण जम्बूद्वीपलाई किरातहरूले आक्रमण गरे तापनि मेरो प्रभावले गर्दा उनीहरू यस ठाउँमा बस्ने छैनन् ॥२६–३१॥

यसरी राम्रोसित बसेको यस देशमा कलियुगमा पनि सम्पूर्ण प्राणीहरूले सधैं मेरो पूजा गर्नेछन् । यहाँ स्तुतिहरू गरेर विधिपूर्वक जसले मेरो दर्शन गर्लान्, ती प्राणीहरू सम्पूर्ण पापलाई नाश गरेर मेरो यानमा बसेर शिवलोक जालान् ॥३३॥ वन, पर्वत, ओडार हुँदै घुमेको यस मृगको रूपलाई जसले सम्झन्छन्, प्रणाम गर्छन्, ती मानिसले पशुको जन्म कहिल्यै लिनुपर्दैन ॥३२–३३॥

हे ब्रह्मा ! भागीरथी गङ्गादेखि उत्तर र पशुपतिदेखि दक्षिणको पचास योजनको क्षेत्र पुण्य हिमवत्क्षेत्र हो । हिमालयको टुपुबाट आएर मेरो मुख अर्थात् पशुपतिबाट बगेका नदीहरू वाग्वती, शिवगङ्गा, आर्या र ब्रह्मसरस्वती हुन् । गङ्गाभन्दा सय गुणा पवित्र जल वाग्वतीमा छ । मेरो क्षेत्र भएको यस वाग्वतीमा स्नान गर्नाले मानिस नारायण बन्दछ ॥३४–३७॥

हे विष्णु ! चन्द्रभागादेखि पूर्व उत्तरपट्टिबाट वाग्वतीको जलमा डुबेर स्नान गर्नाले मनुष्य तपाईंको लोकमा जान्छ । जति पनि हिमालय पर्वतका टाकुराबाट खोला, छहराहरू खस्छन्, ती सबै सधैं गङ्गाजस्तै हुन्छन् । वाग्वतीको जलमा स्नान गर्ने महापापी मानिसहरू पनि यो शरीर छाडेपछि मेरो लोकमा पुग्छन्, यसमा शङ्का छैन ॥३८–४०॥

---

१७. पुण्यम् इति न.सं.पु.पाठः ।
१८. अतिक्रान्ते च सम्पूर्णे जम्बूद्वीपे किरातकै इति न.सं.पु.पाठः ।
१९. स्थितम् इति न.सं.पु.पाठः ।
२०. प्रणमन्तीड्यभक्त्या य इति न.सं.पु.पाठः ।
२१. कटककन्दरोद् गङ्गासमाश्च सर्वदा इति न.सं.पु.पाठः ।

स्रवन्तीनां वरा पुण्या वाग्वती मन्मुखोद्भवा। पञ्चवर्षसहस्रान्ते सा हि गङ्गा भविष्यति ॥४१॥
कीर्त्तनादेव संशुद्धो दर्शनाद् भूतिमाप्स्यति। पानावगाहनात्तस्यास्तारयत्यात्मनः कुलम् ॥४२॥
लोकपालास्तु चत्वारः तीर्थं काङ्क्षन्ति तत्स्वयम्। तत्र स्नात्वा दिवं यान्ति ये मृतास्तेऽपुनर्भवाः ॥४३॥
भयार्तिसंयुतो दुःखी व्याधिभिः पीडितस्तथा। ग्रहभूतापमृत्युप्रयुक्तोऽपस्माररुग्युतः ॥४४॥
वाग्वत्या जीवने स्नात्वा प्रविश्य च यथाविधि। तत्तद्दोषजपीडायास्तस्य शान्तिर्भविष्यति ॥४५॥
वाग्वत्यामत्र ये स्नात्वा मामर्चयन्ति सन्ततम्। उद्धरिष्ये च तान् प्रीत्या घोरात्संसारसागरात् ॥४६॥
यस्तस्याः वारिणा पूर्णमेकं वा घटमुद्धरेत्। स्नापनार्थञ्च नियमी भक्तिश्रद्धान्वितो बुधः ॥४७॥
अश्वमेधफलं प्राप्य मम लोके महीयते। अभ्भसां बिन्दवो यावत्तावद् वर्षञ्च सङ्ख्यया ॥४८॥
अन्तस्तीरेण तस्याञ्च मन्मूलादभिनिःसृतम्। मृगशृङ्गोदकं नाम परं तीर्थं भविष्यति ॥४९॥
सङ्गमे विधिवत्स्नात्वा चोपस्पृश्य यथाविधि। यावज्जीवकृतं पापं तत्क्षणादेव नश्यति ॥५०॥
संस्पृश्येमां तनुं त्यक्त्वा मम लोकं व्रजिष्यति। नदी खर्वरिका नाम वाग्वत्याः पूर्वरोधसि ॥५१॥
तत्रापि स्नानतो देवी पार्वती परितुष्यति। तत्सङ्गमे च वाग्वत्यां तीर्थे चार्याभिधानके ॥५२॥
सकृत्स्नात्वाशु निष्पापो मम लोकं गमिष्यति। सर्वजन्मार्जितैः पापैर्विमुक्तः सान्वयः शुचिः ॥५३॥
स्नातः पर्वसु मल्लोकभाग् विहाय च सम्भवम्। उमायास्तत्र मद्धेतोः कृत्वा संध्यां जपार्चनम् ॥५४॥
संसाराभिभयं त्यक्त्वा मल्लोके स्नानकृत् वसेत्। षष्टिधनुःसहस्राणि यानि गच्छति वाग्वती ॥५५॥

---

हिमालयबाट बग्ने नदीहरूमध्ये मेरो सम्मुखमा रहेकी वाग्वती सबैभन्दा पवित्र छिन्। पाँच हजार कलिवर्षको अन्त्यमा ती नदी गङ्गा नै हुनेछिन्। कुनै पनि साधकले कीर्तन गऱ्यो भने पवित्र हुन्छ, दर्शन गऱ्यो भने सम्पत्ति पाउँछ, पानी पियो वा स्नान गऱ्यो भने आफ्नो कुलै तार्छ। चारै दिशाका लोकपालहरू पनि यस तीर्थको ठूलो चाहना राख्दछन्। यस तीर्थमा स्नान गरेर जुन व्यक्तिहरू मर्छन्, तिनीहरू फेरि जन्मनु नपर्ने गरी स्वर्ग जान्छन्। डरले आत्तिएको, दुःखी, रोगी, ग्रह, भूत, पिशाच आदिको कारणले गर्दा अकालमै मरेको र छारे रोग लागेको व्यक्तिले वाग्वतीको पानीमा प्रवेश गरेर विधिपूर्वक स्नान गऱ्यो भने त्यस व्यक्तिको ती–ती दोषले युक्त भएको सम्पूर्ण पीडा शान्त हुनेछ ॥४१–४५॥

यस वाग्वतीमा स्नान गरेर जसले मलाई निरन्तर पूजा गर्छ, त्यसलाई प्रेमपूर्वक म डरलाग्दो संसाररूपी समुद्रबाट उद्धार गर्नेछु। जुन नियममा बस्ने व्यक्तिले मलाई स्नान गराउनका निमित्त वाग्वतीबाट एक घैंटा पानी निकाल्छ, त्यस व्यक्तिले अश्वमेध यज्ञ गरेको फल प्राप्त गरी जति त्यस घैंटामा पानीका विन्दुहरू छन्,त्यति वर्षसम्म मेरो लोकमा सम्मानित भएर रहन पाउँछ ॥४६–४८॥

मेरो मूलबाट निस्किएको वाग्वती नदीको तीरमा मृगशृङ्गोदक नाम भएको तीर्थ हुनेछ। कुनै मानिसले तीरको नजिकै गएर विधिपूर्वक शृङ्गोदक तीर्थको सेवा गऱ्यो भने जन्म–जन्मान्तरसम्म गरेको सबै पाप तुरुन्त नाश हुन्छ। यिनै वाग्वतीको पूर्वपट्टि षर्वरिका नाम गरेको तीर्थ छ। षर्वरिका तीर्थको भूभागलाई जसले छुन्छ त्यो व्यक्ति मेरो लोकमा जान्छ ॥४९–५१॥

वाग्वती र षर्वरिका यी दुईको सङ्गम भएको आर्या नाम गरेको वाग्वती तीर्थमा स्नान गर्नाले पार्वती खुसी हुन्छिन्। त्यस ठाएँमा एक पटक मात्र स्नान गऱ्यो भने पनि सम्पूर्ण जन्ममा लागेको पापबाट मुक्त भएर त्यो व्यक्ति आफ्नो कुलैसहित पवित्र भएर मेरो लोकमा जान्छ। त्यस ठाउँमा मलाई प्राप्त गर्न उमाले सन्ध्या, पूजा, जप तथा ध्यान गरेकी थिइन्। त्यसैले पर्वहरूमा यस तीर्थमा स्नान गर्ने व्यक्ति जन्म तथा मृत्युसम्म संसारलाई त्यागेर मेरो लोकमा जान्छ। साठी हजार धनु प्रमाण भएको वाग्वती बगेको यस क्षेत्रमा स्नान गर्ने मानिस संसारको भयलाई त्याग गरेर मेरो लोकमा निवास गर्छ ॥५२–५५॥

प्रमाणानि च तावन्ति मुक्तितीर्थं विदुः सुराः । नेदं पापः कृतघ्नो वा कदाचित्प्राप्नुयान्नरः ॥५६॥
शुचयः[२२] श्रद्धया युक्ताः सत्यसन्धाः सुधीवराः । वाग्वत्यां ते नराः स्नात्वा लभन्ते चोत्तमां गतिम् ॥५७॥
दुःखितो वा रुजार्तो वा चाऽपि पातकसंयुतः । वाग्वत्या जीवने स्नात्वा पश्येद्यो मां सुपूजितम् ॥५८॥
तस्य शान्तिर्भवेत्सद्यो देहान्ते शाङ्करं व्रजेत् । तत्प्रवाहजले स्नात्वा सर्वं नश्यति किल्विषम् ॥५९॥
ईतयश्च[२३] समुत्तीर्णा भविष्यन्ति यदामराः । पूजयन्ति च मां स्नात्वा प्रशमं यान्त्यशेषतः ॥६०॥
वाग्वती सरितां श्रेष्ठा यत्र यत्रावगाह्यते । तत्र तत्र फलं तेषां राजसूयाश्वमेधयोः ॥६१॥
विविधान्यत्र तीर्थानि सन्ति पुण्यानि सर्वदा । तज्जलस्पर्शमात्रेण सर्वपापैः प्रमुच्यते ॥६२॥
कोषरूपं भवद्भिश्च विज्ञेयं तत्र[२४] निर्मलम् । तीर्थं कोषोदकं नाम पुण्यं सुरर्षिसुप्रियम् ॥६३॥
तत्र स्नात्वा नरो धीमान् सत्यसन्धो जितेन्द्रियः । सर्वैनोभिर्विनिर्मुक्तः सर्वमेधफलं लभेत् ॥६४॥
अनासक्तो भवेद्यस्तु दक्षिणेन परिक्रमेत् । नरः शैलेश्वरं देवं[२५] लप्स्यते च परां गतिम् ॥६५॥
यो भृगुपतनं कुर्यात्[२६] कामक्रोधविवर्जितः । विमानेन दिवं गच्छेद् वृतः सोऽप्सरसां गणैः ॥६६॥
भृगुमूलं परं तीर्थं ब्रह्मन् ते निर्मितं पुरा । ब्रह्मोद्भवमिति ख्यातं तस्याऽपि शृणु यत्फलम् ॥६७॥
संवत्सरं बुधस्तत्र स्नाति यो[२७] निगमी यमी । ब्रह्मलोके वसेन्नित्त्यं ब्रह्मणा सह मोदते ॥६८॥
तत्र गोरक्षकं नाम गोवृषपदवीक्षितम् । आलोक्य तत् पुमान् देवं गोसहस्रफलं लभेत् ॥६९॥

---

त्यति नै प्रमाण भएका क्षेत्रहरूलाई देवताहरूले मुक्तितीर्थ भनेका छन् । ती तीर्थमा स्नान गर्ने मानिस कृतघ्न हुँदैन, त्यसलाई कहिल्यै पनि पापले छुँदैन । जुन मानिसहरू शुद्ध, श्रद्धायुक्त र सत्यवादी भएर वाग्वतीमा स्नान गर्छन्, ती मानिसहरूले उत्तम गति पाउँछन् । दुःखी होस्, रोगी होस्, महापातकी नै किन नहोस् ? जसले वाग्वतीको जलमा स्नान गरेर मेरो दर्शन गर्छ, त्यसलाई तुरुन्त शान्ति मिल्छ । मरेपछि त्यसले शिवलोक पाउँछ, वाग्वतीका जलको प्रवाहमा स्नान गऱ्यो भने सम्पूर्ण पाप नाश हुन्छ ॥५६–५९॥

हे देवता हो ! जसले स्नान गरेर मलाई पूजा गर्छन्, तिनीहरूका सबै किसिमका ईति, भीति आदि उपद्रवहरू शान्त हुनेछन् । नदीहरूमा श्रेष्ठ वाग्वतीको जलमा जहाँ–जहाँ स्नान गरिन्छ, त्यहाँ–त्यहाँ राजसूय र अश्वमेध यज्ञ गरेको फल प्राप्त हुन्छ । यहाँ विभिन्न किसिमका सधैं पुण्यदायी तीर्थहरू छन् । त्यहाँको जल छुनाले मात्रै पनि सम्पूर्ण पापबाट मानिस मुक्त हुन्छ । तपाईंहरूले जल सङ्कल्प गरेर कोष नाम गरेको तीर्थ बनाउनुभएको थियो । त्यसलाई कोषोदक तीर्थ भनिन्छ । यो तीर्थ देवता तथा ऋषिका निमित्त अत्यन्त प्रिय छ ॥६०–६३॥

सत्यवादी, बुद्धिमान् र जितेन्द्रिय पुरुषले त्यस तीर्थमा स्नान गऱ्यो भने सम्पूर्ण पापबाट मुक्त भएर सबै यज्ञ गरेको फल पाउँछ । जुन पुरुषले आसक्त नभईकन शैलेश्वर भगवान्लाई दायाँ पारेर परिक्रमा गर्छ, त्यसले परमगति पाउँछ । जुन मानिस भृगुपतन नाम गरेको (सूर्यघाट) तीर्थमा काम र क्रोधबाट मुक्त भएर स्नान गर्छ, त्यो व्यक्ति विमानमा चढेर अप्सराहरूका साथ स्वर्ग जान्छ ॥६४–६६॥

हे ब्रह्मा ! तिमीले नै अघि बनाएको ब्रह्मोद्भव नामले प्रसिद्ध भृगुमूल छ । त्यसमा स्नान गर्नाले के फल हुन्छ, त्यो कुरा सुन । जुन विद्वान्, वैदिक र नियममा बसेको व्यक्तिले एक वर्षसम्म त्यस तीर्थमा स्नान गर्छ त्यो व्यक्ति ब्रह्मलोकमा बस्छ र ब्रह्मासँगै रमाउँछ । त्यहाँ साँढेको पदचिह्नले अङ्कित भएको गोरक्षक नाम गरेको तीर्थ छ । त्यस तीर्थमा रहेका गोरक्षनाथको दर्शन गर्नाले हजार गाई दान दिएको फल प्राप्त हुन्छ ॥६७–६९॥

---

२२. शौचिता इति न.सं.पु.पाठः ।
२३. ईरयश्च इति न.सं.पु.पाठः ।
२४. संहृत्य तच्च इति न.सं.पु.पाठः ।
२५. शैलेश्वरस्य पुरुष इति न.सं.पु.पाठः ।
२६. कृत्वा इति न.सं.पु.पाठः ।
२७. स्नायते इति न.सं.पु.पाठः ।

अतः पूर्वोत्तरे भागे गुह्येश्वरीति नामतः। मम मूर्तिश्च सा शक्तिर्भक्तानां मोक्षकृत्सदा ॥७०॥
ते वै गुह्यां न जानन्ति मम मायाविमोहिताः। तपस्तपोधनानाञ्च सिद्धिक्षेत्रेऽनिशं स्थितम्[२८] ॥७१॥
देवदानवगन्धर्वाः सिद्धविद्याधरोरगाः। मुनयोऽप्सरसो यक्षा मोहिता मम मायया ॥७२॥
प्रभासाच्च प्रयागाच्च नैमिषात्पुष्करादपि। कुरुक्षेत्राच्च विबुधाः क्षेत्रमेतद्विशिष्यते ॥७३॥
गौरीशैलञ्च तत्रैव गच्छेत्सिद्धनिषेवितम्। तत्र सन्निहिताऽजस्रं पार्वती शिखरप्रिया ॥७४॥
लोकमाता भगवती लोकरक्षार्थमुद्यता। प्रणमेत्ताञ्च गुह्याख्यां भवेन्मुक्तश्च किल्विषैः ॥७५॥
पञ्चोपचारकैर्भक्त्या परिक्रम्य जपैः स्तवैः। यो मेऽर्चति प्रियां मन्त्री सायुज्यं लभते कृती ॥७६॥
त्यजति यस्तनुं तस्या अधस्ताद्वाग्वतीतटे। महीयते स मल्लोके विहाय कष्टसंसृतिम् ॥७७॥
स्तनकुण्डे उमाया यः स्नाति तत्रैव मानवः। स्कन्दलोकमवाप्नोति देहान्ते दहनच्छविः ॥७८॥
तीर्थं पञ्चनदं नाम पुण्यं ब्रह्मर्षिसेवितम्। अग्निष्टोमफलं तत्र स्नानमात्रेण लभ्यते ॥७९॥
शूलोद्भङ्गे शुभे तीर्थे स्नाति वै[२९] यस्तु मानवः। जातिस्मरणमाप्नोति पापैर्मुक्तो न संशयः ॥८०॥
तस्मादुत्तरतस्तीर्थं परमं सिद्धसेवितम्। नाम्ना प्राप्तार्कपानीयं गुह्यं गुह्यकरक्षितम् ॥८१॥
पूर्णसंवत्सरं यस्तु तत्र स्नायाद् वुधोऽनिशम्। भवेत् स[३०] गुह्यकश्रेष्ठो ममानुचरवल्लभः ॥८२॥
देव्याः शिखरवासिन्या ज्ञेयं पूर्वोत्तरेण च। वाग्वती दक्षिणाच्चैव प्रसृता कन्दरोदरात् ॥८३॥

---

त्यस क्षेत्रको पूर्व–उत्तर (ईशान) भागमा गुह्येश्वरी नाम गरिएकी शक्ति र मेरो मूर्ति रहेका छन्। यी शक्तिले भक्तलाई सधैँ मोक्ष दिने काम गर्छिन्। त्यस सिद्धिक्षेत्रमा सधैँ वास गर्ने ती तपस्वीहरूले मेरो मायाले मोहित भएर यसको रहस्य बुझेका छैनन्। देवता, दानव, गन्धर्व, सिद्ध, विद्याधर, नाग, मुनि, अप्सरा, यक्ष सबै मेरो मायाले मोहित भएका छन्। हे देवता हो ! प्रभास तीर्थ, प्रयाग तीर्थ, नैमिष तीर्थ, पुष्कर तीर्थ र कुरुक्षेत्रभन्दा पनि यो क्षेत्र बढी महत्त्वपूर्ण छ। यस ठाउँमा सिद्धहरूको वासस्थान भएको गौरीपर्वत छ। त्यसको शिखरमा पार्वती रहनुभएको छ ॥७०–७४॥

भगवती गुह्येश्वरी लोककी आमा हुनुहुन्छ, उहाँ सधैँ लोकको रक्षाका लागि तत्पर बन्नुभएको छ। त्यहाँ गएर भगवती गुह्येश्वरीलाई नमस्कार गर्नुपर्छ। त्यसो गर्‍यो भने त्यो व्यक्ति पापबाट मुक्त हुन्छ जसले पञ्चोपचारविधिले भक्तिपूर्वक परिक्रमा गरेर जप तथा स्तुति गरी मेरी पत्नी अर्थात् भगवती गुह्येश्वरीको मन्त्र जप्दै पूजा गर्छ त्यस व्यक्तिले मुक्ति पाउँछ। जसले ती भगवती गुह्येश्वरीको तलतिर रहेको वाग्वतीको तटमा शरीर छोड्छ त्यो व्यक्ति सम्पूर्ण कष्टहरूलाई त्यागेर मेरो लोकमा सम्मानित हुन पुग्छ। जसले पार्वतीको स्तनकुण्ड अर्थात् उमाकुण्डमा गएर स्नान गर्छ, त्यो व्यक्ति मरेपछि आगाको जस्तै ज्योति लिएर स्कन्दलोकमा जान्छ ॥७५–७८॥

यहाँ ब्रह्मर्षिहरू बसेको पञ्चनद नाम गरेको पवित्र तीर्थ छ, त्यहाँ स्नान गर्नाले मात्रै पनि अग्निष्टोम यज्ञ गरेको फल प्राप्त हुन्छ। जुन मानिसले शूलोद्भङ्ग नाम गरेको कल्याणमय तीर्थमा स्नान गर्छ, त्यसलाई पूर्वजन्मको सम्झना हुन्छ, त्यो पापबाट मुक्त हुन्छ, यसमा सन्देह छैन। त्यसभन्दा उत्तरपट्टि सिद्धहरू बसेको यक्षद्वारा रक्षित प्राप्तार्कपानीय नाम गरेको गुप्तस्थान छ। जुन विद्वान्‌ले पूर्ण एक वर्षसम्म सधैँ त्यस तीर्थमा स्नान गर्छ, त्यो व्यक्ति गुह्यक जातिको नेता बन्छ र मेरा अनुचर अर्थात् कुबेरको प्रिय बन्छ। गुह्यकालीको पूर्व र उत्तरपट्टि शिखरवासिनी सुन्दरीदेवी छिन् भनेर जान। सुन्दरीस्थानको दक्षिणपट्टिको गुफाबाट वाग्वती निस्किएकी छन् ॥७९–८३॥

---

२८. स्थिता इति न.सं.पु.पाठः।
२९. स्नायते इति न.सं.पु.पाठः।
३०. भविष्यति इति न.सं.पु.पाठः।

तीर्थं ब्रह्मोदयं नाम पुण्यं पापप्रणाशनम्। तत्र ब्रह्मन् जलं स्पृष्ट्वा स्नात्वा वार्युक्षणेन वा[३१] ॥८४॥
न गच्छेन्मृत्युलोकं स न पापैर्लिप्यते कदा। प्रव्रजन्सुन्दरीतीर्थे समारुह्याद्रिशेखरम् ॥८५॥
आप्लाव्य प्राप्नुयाद्रूपं[३२] देहान्ते चोत्तमां गतिम्। वाग्वत्या मणिमत्याश्च संविद्धे रुद्रधारया ॥८६॥
स्नाति यो[३३] विधिवत्तीर्थे सर्वैनोभिर्विवर्जितः। पूर्वजन्मार्जितैनोभिः स मुक्तो नात्र संशयः ॥८७॥
वर्णाश्रमी[३४] हि यः कश्चित्स्नात्वा दद्यात्तिलोदकम्। तृप्ताश्च पितरस्तस्य भवेयुर्यर्हि वत्सरम् ॥८८॥
कव्यं यः कुरुते तत्र त्रिसप्तकुलमाशु च। अधःस्थानपि धीरोऽसावुद्धरति न संशयः ॥८९॥
शङ्खासुरो हि मद्भक्त्याऽपूजयन् मां हि नित्यशः[३५]। अवध्यं तस्य मूलं तच्छङ्खमूलमिति श्रुतम्[३६] ॥९०॥
शङ्खमूले महातीर्थे करिष्यामि जलाप्लवम्। इति कृत्वा धिया धीरः स्वाश्रमान्निःसृतः पथि ॥९१॥
फलं प्राप्नोति सम्पूर्णं वाजपेयाश्वमेधयोः। सप्तजन्मार्जितं पापं सन्त्यज्य मत्पुरं व्रजेत् ॥९२॥
यत्र कुत्रापि वाग्वत्यां स्नाति वै[३७] विधिवन्मुदा। पशुतिर्यक्तनुं त्यक्त्वा समृद्धे जायते कुले ॥९३॥
सर्वपर्वसु यत्नेन कृत्वा स्नानं विशेषतः। जपार्चनाच्छिवध्यायी नरो नारायणो भवेत् ॥९४॥
जपति मन्मनुं[३८] तत्र गन्ताऽसौ मत्पदं परम्। वाग्वत्या विष्णुपद्याश्च सङ्गमे देवसेविते ॥९५॥
तीर्थे पञ्चनदे नाम्नि स्नातो यास्यति शाङ्करम्। वाग्वत्याश्च प्रभावत्याः सङ्गमे मुनिसेविते ॥९६॥

त्यहाँ पाप नाश गर्ने पवित्र ब्रह्मोदय नाम गरेको तीर्थ छ। हे ब्रह्मा ! त्यहाँको जल छुनाले वा अचाउनाले पनि मानिस सम्पूर्ण पापबाट मुक्त हुन्छ। उसले मृत्युलोक फेरि जानुपर्दैन। सुन्दरी तीर्थमा गएर स्नान गरी जो व्यक्ति त्यो पहाडको शिखरमा चढ्छ, त्यसले मरेपछि उत्तम गति प्राप्त गर्छ। जसले वाग्वती, मणिमती र रुद्रमती मिलेको ठाउँमा विधिवत् भक्तिपूर्वक स्नान गर्छ, त्यो व्यक्ति सम्पूर्ण पापबाट मुक्त हुन्छ। पूर्वजन्ममा गरेका सम्पूर्ण पापहरू हटेर जान्छन्, यसमा शङ्का छैन। त्यस ठाउँमा वर्णाश्रम धर्मावलम्बी जो कोहीले स्नान गरेर एक वर्षसम्म तर्पण दिन्छ, त्यसका सबै पितृहरू तृप्त हुन्छन्। जसले त्यस ठाउँमा पितृहरूलाई अन्नदान दिन्छ, त्यसले दुर्गतिमा परेका भए तापनि एक्काइस कुलका पितृहरूको तुरुन्त उद्धार गर्छ, यसमा सन्देह छैन ॥८४-८९॥

त्यहाँ शङ्खासुरले नित्य मेरो भक्ति गरेर पूजा गरेको थियो, त्यसैले कहिल्यै पनि मूलनाश नहुने शङ्खमूल नामको प्रसिद्ध तीर्थ भयो। शङ्खमूल महातीर्थमा स्नान गर्छु भनेर जुन मानिस आफ्नो आश्रम अर्थात् घरबाट निस्किएर बाटो लाग्छ, त्यसले वाजपेय र अश्वमेध यज्ञ गरेको सम्पूर्ण फल प्राप्त गर्छ, सात जुनीसम्म लागेको पापबाट मुक्त भई त्यो मेरो लोकमा जान्छ ॥९०-९२॥

जुन कुनै क्षेत्रमा भए पनि विधिपूर्वक जसले वाग्वतीको जलमा आनन्दसित स्नान गर्छ, त्यसले पशुमय शरीरलाई छोडेर उत्तम कुलमा जन्म पाउँछ। वाग्वतीमा स्नान गरेर सबै पर्वमा परिश्रमका साथ जसले जप, पूजा र शिवजीको ध्यान गर्छ त्यो व्यक्ति नारायण बन्दछ। जसले वाग्वती र विष्णुमतीको सङ्गमस्थल भएको सङ्गममा भएको, देवताहरूद्वारा सुसेवित त्यस तीर्थमा बसेर मेरो मन्त्र जप्छ त्यसले मेरो उत्तम पद पाउँछ। मुनिहरू बसेको वाग्वती र प्रभावती नदीको सङ्गममा रहेको पञ्चनद नाम गरेको तीर्थमा जसले स्नान गर्छ, त्यो व्यक्ति शिवलोक पुग्दछ ॥९३-९६॥

३१. वात्युक्षणेन वा इति न.सं.पु.पाठः।
३२. आप्लव्य सो लेभद्रूपम् इति न.सं.पु.पाठः।
३३. स्नायते इति न.सं.पु.पाठः।
३४. वर्णाश्रम इति न.सं.पु.पाठः।
३५. नित्यं मां तत्र पूजयत् इति न.सं.पु.पाठः।
३६. अवध्यस्तस्य मूलं तच्छङ्खमूल इति श्रुत इति न.सं.पु.पाठः।
३७. स्नायते इति न.सं.पु.पाठः।
३८. मन्मनु जप्यते इति न.सं.पु.पाठः।

सँस्नातो[३९] विधिवद्भक्त्या कामक्रोधविवर्जितः। गङ्गाद्वारफलं यावल्लब्ध्वा यास्यति वैष्णवम् ॥९७॥
दृष्ट्वा[४०] मां पूजयेद् भक्त्या पशुयोनिञ्च मामिकाम्। मुच्यते पशुपाशेभ्यः कामस्तेन हि[४१] लभ्यते ॥९८॥
पशुयोनिजलं पीत्वा पशुयोनौ न जायते। अत्र विद्याधरा देवाः सिद्धाश्च मुनयोऽमराः ॥९९॥
स्नात्वा मां पूजिष्यन्ति यक्षोरगाश्च राक्षसाः। स्वल्पं वाप्यत्र[४२] यत्किञ्चिद् द्विजेभ्यो दीयते धनम् ॥१००॥
तदक्षयं भवेदाशु दानपुण्यफलं महत्। तत्तत्सर्वं प्रयत्नेन कर्त्तव्यञ्चैव निर्जराः ॥१०१॥
बलिष्ठं क्षेत्रमन्यच्च[४३] त्रिषु लोकेषु न विद्यते। अपि दुष्कृतकर्माणः क्षेत्रेऽस्मिन्निवसन्ति ये ॥१०२॥
सततं पुरुहूतस्य सितस्थाने वसन्ति ते। श्वसुरो मे स्थितो तत्र हिमवान्भूधरेश्वरः ॥१०३॥
प्रभवन्ति यतः सर्वा गङ्गाद्याः सरितां वराः। तस्मात्क्षेत्रवरे पुण्ये पुण्याः सर्वाश्च निम्नगाः ॥१०४॥
सर्वे ते निर्झराः[४४] पुण्याः सर्वे पुण्या शिलोच्चयाः। यत्र यत्र स्थिताः स्थाने मे लिङ्गमूर्तयोऽनिशम् ॥१०५॥
तत्तत्स्थानं प्रियं शश्वत्सर्वदुष्कृतनाशनम्। आश्रमो मेऽत्र भविता सिद्धर्षिसुरसेवितः ॥१०६॥
जलेश्वर इति ख्यातो मल्लिङ्गन्तु[४५] जलान्तरे। योजनाभ्यन्तरं क्षेत्रं समन्तात्सर्वतोदिशम् ॥१०७॥
मूलक्षेत्रं तु विज्ञेयं मयात्राधिष्ठितं चिरम्। अतः पूर्वोत्तरे भागे वासुकिर्नाम नागराट् ॥१०८॥
वृतो नागसहस्रेण द्वारि तिष्ठति मेऽनिशम्। स विघ्नं कुरुते नृणां मत्क्षेत्रं विशतां सदा ॥१०९॥
प्रथमं स नमस्कार्यस्ततोऽहं क्रमशः पुनः। अनेन विधिना पुंसामविघ्नं विशतां भवेत् ॥११०॥

---

जसले काम र क्रोधलाई छोडेर विधिवत् भक्तिपूर्वक त्यहाँ स्नान गर्छ, त्यसले गङ्गाद्वार अर्थात् हरिद्वारमा नुहाएको फल प्राप्त गरेर विष्णुलोक पाउँछ। जसले पञ्चनद तीर्थको दर्शन गरेर मेरो पशुयोनिका पूजा गर्छ, त्यो व्यक्ति पशुपाशबाट मुक्त हुन्छ, इच्छा लागेको फल पनि त्यसले प्राप्त गर्छ ॥९७–९८॥

हे देवता हो ! पशुयोनि अर्थात् वाग्वती र प्रभावतीको जल पियो भने मानिसले पशुयोनिमा गएर जन्मनुपर्दैन। यहाँ विद्याधर देवता, सिद्ध, मुनिहरू, देवताहरू, नागहरू र राक्षसहरू स्नान गरेर मेरो पूजा गर्छन्। थोरै होस् वा जति होस्, यस ठाउँमा ब्राह्मणलाई दान दिइन्छ भने त्यो तुरुन्त अक्षय हुन्छ। त्यहाँ गरेको दानको पुण्यको फल ज्यादै ठूलो छ, त्यसैले जसरी भए पनि त्यस ठाउँमा दान दिनैपर्छ। तीनै लोकमा योभन्दा बलियो तीर्थ अर्को कुनै छैन। सधैँ दुष्कृत्य गर्ने व्यक्तिहरू पनि यदि यस ठाउँमा बसे भने तिनीहरूले उज्वल इन्द्रलोकमा वास पाउँछन्। त्यहाँ मेरो ससुरा हिमालयको वासस्थान छ, जसबाट गङ्गा आदि गरिएका सम्पूर्ण उत्कृष्ट नदीहरू पैदा भएका छन्। त्यहाँका सम्पूर्ण क्षेत्रहरू पवित्र छन्। सबै नदी, झरना, खोल्सा र टाकुरा पुण्यमय छन्। जुन–जुन ठाउँमा मेरा लिङ्ग वा मूर्तिहरू रहेका छन्, सम्पूर्ण पापलाई नाश गर्ने ती ठाउँमा मेरा निमित्त अत्यन्त प्रिय छन् ॥९९–१०५॥

सिद्धऋषि र देवताको बसोवास भएको यो ठाउँमा जलेश्वर नाम गरेको मेरो आश्रम छ। त्यहाँ मेरो लिङ्ग जलभित्र रहेको छ। यसको एक योजन सबै दिशातिर रहेको क्षेत्र मूलक्षेत्र हो भनेर जान, यहाँ म सधैँ बस्दछु। जलेश्वरभन्दा पूर्व र उत्तर (ईशान) पट्टिको भागमा वासुकि नाम गरेको नागराज हुनुहुन्छ। हजारौँ नागले सहित भएर उहाँ मेरो ढोकामा सधैँ बस्नुहुन्छ। मेरो क्षेत्रमा प्रवेश गर्न लागेका मानिसलाई उहाँले रोक्नुहुन्छ। पवित्र उहाँलाई नमस्कार गर्नुपर्छ, क्रमशः त्यसपछि मलाई नमस्कार गर्नुपर्छ, यसरी गऱ्यो भने प्रवेश गर्न चाहने व्यक्तिका लागि विघ्न पर्दैन ॥१०६–११०॥

---

३९. स्नायते इति न.सं.पु.पाठः।
४०. पश्ये इति न.सं.पु.पाठः।
४१. कामसिद्धश्च इति न.सं.पु.पाठः।
४२. स्वल्पेनाप्यत्र इति न.सं.पु.पाठः।
४३. क्षेत्रमन्येषाम् इति न.सं.पु.पाठः।
४४. सर्वाप्रस्रवणा इति न.सं.पु.पाठः।
४५. मल्लिङ्गस्तु इति न.सं.पु.पाठः।

वन्दते परया भक्त्या यो मामत्र दिवौकसः ! सार्वभौमो भवेद्राजा सर्वलोकनमस्कृतः ॥१११॥
गन्धमाल्यैश्च मे मूर्तिमभ्यर्चयति यो नरः । सर्वपापानि सन्त्यज्य मम लोकं गमिष्यति ॥११२॥
घृतेन मधुना वापि दधिक्षीरैश्च शुद्धकैः । गन्धोदकेन क्षीरेण शीतोदकेन वा पुनः ॥११३॥
स्नपयति च यो भक्त्या महत्पुण्यफलं लभेत् । लभेतानेन हि स्वर्गं[४६] लब्धभोगः क्रमान्मम ॥११४॥
घृतेन मम लोकञ्च मधुना सुरलोककम् । दध्ना वै वैष्णवं लोकं मच्छासनाद् व्रजिष्यति ॥११५॥
विद्याधरपदमिक्षुस्नपनाद् व्रजति ध्रुवम्[४७] । गन्धोदकेन गान्धर्वं क्षीरेण शशिनः पुरम् ॥११६॥
शीतोदकेन निष्पाप उष्णोदकेन पोषकः[४८] । अङ्गपूजान्तु यः कुर्यात्पुनर्नानाविधैर्मम ॥११७॥
सर्वकामफलं भुक्त्वा मोदते स ममालये । अङ्गप्रदीपमालां यो भक्त्या मम करिष्यति ॥११८॥
देवदेहो भवेदन्ते मम पार्श्वचरोऽनिशम् । अङ्गप्रदक्षिणं धीरः करिष्यति च भक्तिमान् ॥११९॥
स रूपवान् भवेदत्र निष्पापः परमं व्रजेत् । अत्र पूजान्तु यो दद्यान्मम भक्त्यातियत्नतः ॥१२०॥
आयुष्मान् बलवान् भूत्वा जायते स महीपतिः । दीपवृक्षन्तु यो दद्याद् भवने मम शोभनम्[४९] ॥१२१॥
चक्षुष्माँश्च भवेन्नित्यं तेजस्वी जन्मजन्मनि । गुग्गुलं ज्वालयेद्[५०] यो मे नानाधूपाँश्च[५१] भक्तिमान् ॥१२२॥
जन्मान्तरकृतैः पापैः स मुच्यते न संशयः । दद्यात् यः स्वर्णवस्त्राणि मह्यं स मम लोकभाक्[५२] ॥१२३॥
सवत्सां कपिलां दत्त्वा भूयो यज्ञफलं लभेत् । गीतवादित्रनृत्यैश्च स्तुतिभिर्जागरेण वा ॥१२४॥

---

हे देवता हो ! जसले मलाई परमभक्तिले यस ठाउँमा आएर नमस्कार गर्छ, त्यो व्यक्ति सबै लोकले नमस्कार गरिएको चक्रवर्ती राजा हुन्छ । जुन मानिसले चन्दन र माला लिएर मेरो मूर्तिको पूजा गर्छ, त्यो व्यक्ति सम्पूर्ण पाप त्याग गरेर मेरो लोकमा जान्छ । जसले घिउ, मह, दही, दूध, पवित्र जल र चन्दनमिश्रित जलले भक्तिपूर्वक मलाई स्नान गराउँछ, त्यसलाई ठूलो पुण्य प्राप्त हुन्छ । यसै पुण्यका प्रभावले धेरै समयसम्म स्वर्गको सुखभोग गरी क्रमैले मेरो लोक प्राप्त गर्छ ॥१११-११४॥

मेरो कृपाले गर्दा कसैले घिउले स्नान गरायो भने मेरो लोक पाउँछ, महले स्नान गरायो भने देवलोक पाउँछ, दहीले स्नान गरायो भने विष्णुलोक पाउँछ । जसले उखुको रसले मलाई स्नान गराउँछ, त्यो विद्याधरलोक जान्छ । चन्दन मिसिएको पानीले जसले मलाई स्नान गराउँछ, त्यो गन्धर्वलोक जान्छ । दूधले जसले मलाई स्नान गराउँछ, त्यो चन्द्रलोक जान्छ । चिसो पानीलो स्नान गरायो भने पापबाट मुक्त हुन्छ, तातो पानीले स्नान गरायो भने त्यस व्यक्तिलाई पुष्टि मिल्छ । जसले विभिन्न ढङ्गबाट मेरो शरीरको पूजा गर्छ, त्यो व्यक्ति सबै इच्छा पूर्ण गरेर कैलासमा आनन्दसित बस्न पाउँछ ॥११५-११८॥

जसले भक्तिपूर्वक मेरो शरीरलाई नै उज्यालो तुल्याउने खालको माला लगाइदिन्छ, त्यो व्यक्ति अन्त्यमा देवताको शरीर लिएर सधैँ मेरो पार्श्ववर्ती बनेर बस्न पुग्छ । जुन भक्तले मेरो लिङ्गको वा मूर्तिको प्रदक्षिणा गर्छ, त्यो व्यक्ति रूपवान् र पापरहित भएर परमपदमा पुग्छ । त्यस ठाउँमा आएर भक्तिपूर्वक जसले मलाई पूजा गर्छ, त्यो व्यक्ति आयुष्मान् तथा बलवान् भएर राजा बन्न पुग्छ । जसले मेरो मन्दिरमा वृक्षाकार दीपपङ्क्ति समर्पण गर्छ, त्यो व्यक्ति प्रत्येक जन्ममा सधैँ तेजस्वी र सुन्दर नेत्रले युक्त भएको हुनेछ । जसले गोकुलधूप र अनेकौँ धूपहरू भक्तिपूर्वक बाल्दछ, त्यो व्यक्ति अनेकौँ जन्ममा गरेका पापबाट मुक्त हुन्छ, यसमा सन्देह छैन ।११९-१२२½॥

मलाई सुन तथा वस्त्रहरू दान गर्ने व्यक्ति मेरै लोकमा जान पाउँछ । बाच्छोले सहित भएकी कैली गाई दान गर्‍यो भने त्यसले यज्ञ गरेको फल पाउँछ । जसले गीत, वाद्य, नृत्य, स्तुति, जाग्राम गरेर मेरो सेवा गर्छन् ती व्यक्ति मेरो घर अर्थात् शिवलोक जान्छन् ॥११९-१२४½॥

---

४६. अननैव लभेत्स्वर्गम् इति न.सं.पु.पाठः ।
४७. विद्याधरपदं गच्छेत्स्नायदिक्षुरसेन च इति न.सं.पु.पाठः ।
४८. निष्पापमुष्णोदकेन पोषकम् इति न.सं.पु.पाठः ।
४९. शोभकम् इति न.सं.पु.पाठः ।
५०. दहते इति न.सं.पु.पाठः ।
५१. नानाधूपानि इति न.सं.पु.पाठः ।
५२. सुवर्णञ्च वस्त्राणि मद्दाता मम लोकभाक् इति न.सं.पु.पाठः ।

ये मे कुर्वन्ति सेवां वै गमिष्यन्ति ममालयम् । यो दद्याद् भोजनं भक्त्या विप्रेभ्यः श्रद्धयान्वितः ॥१२५॥
सोऽमृताशी भवेत्स्वर्गे सुतृप्तोऽमरपूजितः । व्रतोपचारकैर्होमैर्नैवेद्यैश्चारुभिस्तथा ॥१२६॥
यजते ब्राह्मणैरार्यः श्रद्धया च समन्वितः । षष्टिवर्षसहस्राणि सन्तुष्टो दिवि मोदते ॥१२७॥
ऐश्वर्यं प्रतिपद्येत मम लोके पुनः पुनः । ब्राह्मणः क्षत्रियो वैश्यः शूद्रः स्त्री वा न संशयः ॥१२८॥
शैलेश्वरं तु संस्नाप्य मे मूर्तिं यदुपासते । मत्पार्षदो भवेत्स्वैरं मत्प्रियप्रमथैः सह ॥१२९॥
शैलेश्वरं परं गुह्यं गतिः शैलेश्वरः परा । शैलेश्वरात् परं क्षेत्रं न क्वचिद् भुवि विद्यते ॥१३०॥
ब्रह्महा गुरुहा गोघ्नः स्पृष्टो वै सर्वपातकैः । क्षेत्रमेतदनुप्राप्तः तस्य स्यान्निर्मला तनुः[५३] ॥१३१॥
अत्र श्लेष्मान्तकारण्ये पुण्ये त्रिदशवन्दिते । यत्र यत्र मया देवाश्चरता मृगरूपिणा ॥१३२॥
अशितं शयितं यातं विहृतञ्च समन्ततः । तत्र तत्राभवत्सर्वं पुण्यक्षेत्रं हि सर्वतः ॥१३३॥
मृगस्थलीगिरिं भ्रान्त्वा[५४] ब्रीहिञ्च विक्षिपेन्नरः । सुवर्णरतिकातुल्यं लभेत त्वरितं फलम्[५५] ॥१३४॥
मार्गकृष्णचतुर्दश्यां मत्प्रियायां तिथौ मया । मृगरूपं धृतं तत्र क्षिपेत् बीजं शताधिकम् ॥१३५॥

---

जसले यहाँ भक्ति तथा श्रद्धापूर्वक ब्राह्मणहरूलाई भोजन गराउँछ, त्यो व्यक्ति स्वर्गमा तृप्त भएर अमृत खाँदै बस्न पाउँछ, त्यसलाई देवताले पनि सम्मान गर्छन् । जसले यस ठाउँमा व्रत, पूजा, होम, राम्रा–राम्रा नैवेद्यद्वारा पूजा गर्छ, यज्ञ गर्छ, श्रद्धापूर्वक ब्राह्मणलाई दान गर्छ भने त्यो व्यक्ति साठी हजार वर्षसम्म सन्तुष्ट भएर स्वर्गमा आनन्दका साथ बस्न पाउँछ । ब्राह्मण, क्षत्रिय, वैश्य, शूद्र अथवा स्त्रीजाति जोसुकै होस्, तिनीहरूले ऐश्वर्य प्राप्त गर्छन् र बारम्बार मेरो लोकमा जान पाउँछन् ॥१२५–१२८॥

भगवान् शैलेश्वरलाई स्नान गराएर जसले मेरो मूर्तिको आराधना गर्छ त्यो व्यक्ति मेरो पार्षद भएर मेरा प्रिय प्रमथ गणहरूका साथ स्वच्छन्दसित भ्रमण गर्न पाउँछ ॥॥ शैलेश्वर अत्यन्त गुप्त मेरो स्वरूप हो । शैलेश्वरको दर्शन गर्नाले ठूलो गति प्राप्त हुन्छ । शैलेश्वरजस्तो क्षेत्र यस पृथ्वीमा कतै पनि छैन ॥१३०॥ ब्रह्महत्या, गुरुहत्या, गोहत्याजस्ता ठूला–ठूला पाप गर्ने मानिस पनि मेरो शैलेश्वरक्षेत्रमा प्रवेश गर्‍यो भने मात्र पनि त्यसको शरीर पवित्र हुन्छ ॥१२९–१३१॥

हे देवता हो ! देवताले पनि श्रद्धा गरेको यस श्लेष्मान्तक जङ्गलमा जुन–जुन ठाउँमा मृगको रूप लिएर म हिँडें, सुतें, खाएँ, विहार गरें, त्यो सबैतिरको सम्पूर्ण क्षेत्र पुण्यमय छ । जुन मानिसले मृगस्थली पर्वतको प्रदक्षिणा गरेर शतबीज छर्दछ, त्यसले छरेको एक दानाबराबर एकरति सुवर्ण छरे बराबर फल पाउँछ । जहाँ मैले मृगको रूप धारण गरेर पशुको योनि लिएको थिएँ, त्यस मेरो तिथि मार्ग कृष्ण चतुर्दशीको दिन त्यो ठाउँमा शतबीज छर्नुपर्छ ॥१३२–१३५॥

---

५३. क्षेत्रमेतदनुप्राप्ते निर्मलो हि भवेत्तनु इति न.सं.पु.पाठः । ५४. भ्राम्य इति न.सं.पु.पाठः ।
५५. ब्रीहिमेकं लभेत्फलम् इति न.सं.पु.पाठः ।

स्कन्द उवाच

इत्युक्त्वा भगवान् व्योम्नि विरराम तदा मुने। श्रावयँश्च स्वकीयां तां वाणीं लोकोपकारिणीम् ॥१३६॥
ये शृण्वन्ति वचः पुण्यं पवित्रं पापनाशनम्। श्रद्धावन्तो हि तद्भक्त्या हरिणेशमुखाच्च्युतम् ॥१३७॥
आयुः कीर्त्तिं यशः सौख्यं प्राप्नुवन्ति न संशयः। इह लोके सुखं भुक्त्वा गच्छन्ति शिवधामनि ॥१३८॥
श्रुत्वेति तस्माद्विबुधा वचस्तत् कृत्वेति तथ्यं मुमुहुर्भृशं वै।
ब्रह्मा पुनर्वक्तुमियेष तूर्णं रुद्रं करस्थापितशृङ्ग एव ॥१३९॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे हरिणेश्वरवाक्यं नाम चतुरशीतितमोऽध्यायः ॥८४॥

---

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! यति भनेर दुनियाको हित गर्ने आफ्नो भनाइ सुनाएर भगवान् शङ्कर आकाशमा विलीन हुनुभयो। जसले पापलाई नाश गर्ने पवित्र हरिणेश्वरको मुखबाट निस्किएको पवित्र वचन श्रद्धापूर्वक सुन्छन् ती व्यक्तिहरूले आयु, कीर्ति, यश र सुख पाउँछन् अनि ती व्यक्तिहरू यस लोकमा सुखभोग गरेर अन्त्यमा शिवलोक जान्छन्, यसमा सन्देह छैन ॥१३६–१३८॥

त्यो कुरा सुनेर सबै देवताहरू अत्यन्त मोहित भए। हातमा सिङ लिएरै ब्रह्माले हत्त न पत्त रुद्रसित फेरि भन्नुभयो ॥१३९॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा मृगरूशिवको देवताहरूलाई उपदेशनामक चौरासियौं अध्याय पूरा भयो।

# पञ्चाशीतितमोऽध्यायः

गोकर्णतीर्थे रावणकृता तपस्या तत्सिद्धिश्च

ब्रह्मोवाच

दुःखार्णवनिमग्नानां प्राणिनां मोक्षहेतुकम्। यदुक्तं भवता नोऽद्य पुराणं यत्सुधामयम्[1] ॥१॥
त्वन्मुखान्निःसृतं सारं पवित्रं परमेश्वर। शृणोति विधिवद् भक्त्या तस्य स्वर्गः करे स्थितः ॥२॥
भूमन् महत्तरं पुण्यं पुराणं पापनाशकम्। भक्त्या शृणोति यो धीरः स्वर्गस्तस्य न दूरतः ॥३॥
मत्करस्थेन शृङ्गेण विष्णोर्हस्तगतेन च। पुरन्दरकरस्थेन किं विधेयं वदेश्वर ॥४॥

स्कन्द उवाच

निशम्यैतद्वचो रुद्रो व्योमस्थः परमेष्ठिनम्। प्रत्युवाच पुनस्तत्र भगवान् हरिणेश्वरः ॥५॥
यत्त्वत्करस्थितं शृङ्गं सुन्दरं[2] मम मध्यगम्। तत्रैव स्थाप्यतां ब्रह्मन् चन्द्रभागातटे शुभे ॥६॥
गोकर्णेश्वर इत्येवं मेदिन्यां ख्यातिमेष्यति। दशग्रीवः स्वकं कार्यं साधयिष्यति श्रद्धया ॥७॥
त्वत्करस्थमिदं विष्णो शृङ्गमूलं सुशोभनम्। नीत्वा रसातले रम्ये स्थापनीयं प्रयत्नतः ॥८॥
तच्च[3] सम्पूज्यते भक्त्या नागदानवराक्षसैः। शृङ्गेश्वर इति[4] प्रोक्तं पातालतलवासिभिः ॥९॥
शृङ्गाग्रं हारिणं पुण्यं मदीयं[5] त्रिदिवेश्वर। नीत्वाऽमरावतीं रम्यां स्थापनीयं हि श्रद्धया ॥१०॥
यदाहरति रक्षेन्द्रस्त्वत्पुरं बलदर्पितः। तच्च[6] दक्षिणगोकर्णे भविष्यति पुरन्दर ॥११॥

---

## अध्याय – ८५

गोकर्णतीर्थमा रावणले गरेको तपस्या र सिद्धिलाभ

ब्रह्माले भन्नुभयो – दुःखरूपी समुद्रमा डुबेका प्राणीहरूलाई मोक्ष दिने अमृतसमान जुन पुराण हजुरले हामीहरूलाई बताउनुभयो, हजुरको मुखबाट निस्किएको सार वस्तुले युक्त भएको पवित्र यो पुराण जसले विधिपूर्वक भक्तिले सुन्दछ, त्यसको हातमा स्वर्ग बसेको हुन्छ अर्थात् त्यसले स्वर्ग जान पाउँछ। हे परमेश्वर ! जसले पापलाई नाश गर्ने अत्यन्त पवित्र यो पुराण भक्तिपूर्वक सुन्छ, त्यसका लागि स्वर्ग टाढा छैन अर्थात् उसले स्वर्ग जान पाउँछ। हे ईश्वर ! मेरो हातमा रहेको, विष्णुको हातमा रहेको र इन्द्रको हातमा रहेको यो सिङले के गर्ने ? बताउनुहोस् ॥१–४॥

कार्तिक स्वामीले भन्नुभयो – ब्रह्माको यस्तो वचन सुनेर आकाशमा रहेका भगवान् हरिणेश्वरले फेरि त्यहाँ भन्नुभयो। जुन तपाईंको हातमा रहेको मेरो सिङको बीच भाग छ, त्यसलाई हे ब्रह्मा ! यस क्षेत्रकै चन्द्रभागा नदीको पवित्र तटमा स्थापना गर्नुहोस्। त्यो लिङ्ग गोकर्णेश्वरको नामले संसारमा प्रसिद्ध हुनेछ, रावणले त्यहाँ आएर मबाट आफ्नो काम सिद्ध गर्नेछ ॥५–७॥

हे विष्णु ! यो तपाईंको हातमा रहेको सुन्दर सिङको फेदलाई तपाईंले रसातलमा लगेर प्रयत्नपूर्वक स्थापना गर्नू। त्यसलाई पातालमा बस्ने नाग, दानव र राक्षसहरूले शृङ्गेश्वर भनेर भक्तिपूर्वक पूजा गर्नेछन्। हे इन्द्र ! हरिण रूपधारी मेरो पवित्र सिङको अग्रभाग (टुप्पो)लाई सुन्दर अमरावती नगरीमा तिमीले स्थापना गर्नुपर्दछ। हे इन्द्र ! जब बलले मातेका राक्षसहरूले तिम्रो राजधानी (अमरावती) बाट त्यसलाई अपहरण गर्नेछन्, त्यसपछि त्यो सिङको अग्रभाग दक्षिण गोकर्णमा गएर बस्नेछ ॥८–११॥

---

१. यत्सुधारसम्, इति न.सं.पु.पाठः।
२. हारिणम्, इति न.सं.पु.पाठः।
३. स च, इति न.सं.पु.पाठः।
४. शृङ्गेश्वरमिति, इति न.सं.पु.पाठः।
५. मामेकम्, इति न.सं.पु.पाठः।
६. स च, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

इत्युक्त्वा भगवान् तेभ्यः सुरासुरनमस्कृतः। द्योतयन् प्रभयाकाशं तत्रैवान्तर्दधे विभुः ॥१२॥
श्रुत्वैतद्वचनं तस्य ब्रह्मविष्णुपुरन्दराः। विस्मयं परमं जग्मुर्विलीने शङ्करे ततः ॥१३॥
सङ्गृह्य सहसा शक्रो हारिणं शङ्कराज्ञया। मुदाऽमरावतीं रम्यां निर्ययौ सहसाऽमरैः ॥१४॥
तत्रैव स्थापितं सम्यक् हारिणञ्च पुरन्दरः। नानोपहारकैर्नित्यं पूजति स्म महोत्सवैः ॥१५॥
शृङ्गमूलं तु तन्नीत्वा पाताले रत्नदीपिते। स्थापयामास सहसा भगवान् मधुसूदनः ॥१६॥
अपूपुजन्मुदा नित्यं रक्षःपन्नगदानवाः। नानोपहारकैर्भक्त्या चाऽद्याऽपि पूजयन्ति हि ॥१७॥
मध्यमं हारिणं शृङ्गं चन्द्रभागासरित्तटे। वाग्वत्याः पश्चिमे तीरे तयोः पूते सुसङ्गमे ॥१८॥
स्थापयामास तत्रैव भगवान् कमलोद्भवः। आनर्च विधिवद्भक्त्या श्रुतिभिश्च स्तवैर्मुदा ॥१९॥
ब्रह्मणा स्थापितं श्रुत्वा गोकर्णेश इति[७] श्रुतम्। सम्प्राप्ता मुनयः स्वर्गात्तीर्थयात्राटनार्थिनः ॥२०॥
यावन्ति भुवि तीर्थानि गङ्गादीनि धरातले। प्रभावाद्देवदेवस्य सम्भूतानि शुभानि च ॥२१॥
अशेषाणि परिभ्रम्य मुनयः संशितव्रताः। ब्रह्माणं प्रणिपत्योचुः गोकर्णं परिपूज्य च ॥२२॥

ऋषय ऊचुः

भगवन् त्वां विना स्वर्गे स्थातुं नेच्छामहे चिरम्। तस्मात्स्वर्गमलङ्कर्तुं प्रसादं कुरु लोकसृक् ॥२३॥

---

कार्तिक स्वामीले भन्नुभयो – यति भनेपछि देवता र राक्षसहरूले नमस्कार गरिएका भगवान् शङ्कर आफ्नो कान्तिद्वारा आकाशलाई उज्यालो पार्दै त्यसै ठाउँमा अन्तर्धान हुनुभयो। भगवान् शङ्कर विलीन हुनुभएपछि उहाँले भनेको कुरा सुनेर ब्रह्मा, विष्णु र इन्द्र अत्यन्त छक्क परे। त्यसपछि शङ्करको निर्देशन अनुसार इन्द्र तुरुन्त हरिणको सिङ लिएर देवताहरूका साथ प्रसन्न हुँदै सुन्दर अमरावतीमा गए। इन्द्रले त्यहाँ मृगको सिङलाई राम्रोसित स्थापना गरे। त्यसपछि बडो उत्सवका साथ विभिन्न उपहारहरू चढाएर सधैँ इन्द्रले पूजा गरे ॥१२-१५॥

भगवान् विष्णुले त्यो सिङको फेदलाई लगेर रत्नले उज्यालो भएको पातालमा स्थापना गर्नुभयो। आज पनि त्यहाँ राक्षस, सर्प र दानवहरूले भक्तिपूर्वक विभिन्न उपहारहरू चढाएर सधैँ प्रसन्न हुँदै भगवान् शङ्करको पूजा गर्दछन्। ब्रह्माले हरिणको सिङको माझको भागलाई वाग्वतीको पश्चिमपट्टि रहेको चन्द्रभागा नदीको पवित्र सङ्गमस्थलमा स्थापना गर्नुभयो। त्यसपछि उहाँले वैदिक स्तुतिद्वारा प्रसन्न हुँदै विधिपूर्वक त्यस लिङ्गको पूजा गर्नुभयो ॥११६-१९॥

गोकर्णेश्वर नामले प्रसिद्ध भएको त्यो सिङ ब्रह्माले स्थापना गर्नुभएको छ भन्ने सुनेर तीर्थयात्राका लागि स्वर्गबाट मुनिहरू आए। जति पनि गङ्गा आदि गरिएका तीर्थहरूमा जल छन्, ती सबै कल्याणमय तीर्थहरू भगवान् शङ्करको प्रभावबाट पैदा भएका हुन्। व्रत लिएका ती मुनिहरूले सम्पूर्ण तीर्थहरू घुमेर गोकर्णलाई पूजा गरी ब्रह्माको नजिकै गएर भने ॥२०-२२॥

ऋषिहरूले भने – हे लोकस्रष्य ब्रह्माजी ! तपाईं नभएको हुनाले हामीलाई स्वर्गमा बस्ने पटक्कै इच्छा भएन, त्यसैले स्वर्गलाई अलङ्कृत तुल्याइदिएर हामीलाई अनुग्रह गर्नुहोस् ॥२३॥

---

७. गोकर्णेशमिति, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

आत्मजानां वचस्तेषां तदाकर्ण्य पितामहः[८] । निवासायाऽऽदिशत्तत्र पौत्रं विश्रवसं ध्रुवम् ॥२४॥
वत्साऽर्हयैश्वरं लिङ्गं मदीयं पितृतारकम् । साधकं योगिनां स्वान्तं लोककामफलप्रदम् ॥२५॥
अहोरात्रमहं स्थास्ये स्वर्गे देवान् प्रबोधयन् । यावत्प्रत्यागमिष्यामि तावदत्र प्रपालय ॥२६॥
देवर्षयो हि मां सर्वे यूयमत्राऽऽश्रितं विदुः । कौणपाद्यास्तपस्यन्ति साधयिष्यन्ति स्वेप्सितम्[९] ।
भाद्रकृष्णचतुर्दश्यां लिङ्गे संस्थापिते कुहौ ॥२७॥
पुण्यक्षेत्रेषु ते जग्मुः प्रणम्य मुनयः सुराः[१०] । ततो ब्रह्मा ययौ स्वर्गं ब्रह्मलोकं सनातनम् ॥२८॥
तमर्चितुं समादिश्य सर्वैश्च मुनिभिः सह ।
देवाश्च शेषाः प्रययुर्हि नाकं सम्पूज्य लिङ्गं सहसा च भक्त्या ।
गोकर्णरुद्रं विविधार्हणैस्तमाधाय वाक्यं हरिणेश्वरस्य ॥२९॥
विश्रवाश्च ततस्तत्र तपस्तेपे भृशन्तदा । मात्रा सह कुबेरस्य गोकर्णेशं प्रपूजयन् ॥३०॥
कुबेरस्तत्र सन्तेपे भक्त्येशमर्हयन्सदा । द्वादशाब्दं समारभ्य यावत्तत्पञ्चविंशतिम् ॥३१॥
नृत्यगीतैः स्तवैर्वाद्यैः पितामहः प्रतोषितः । ददौ लङ्कां कुबेराय राज्यं स्वर्गमयं विभुः ॥३२॥
अवात्सीत् तत्र पौलस्त्यः कौणपवर्गसेवितः । भुञ्जन् सहस्रवर्षं तत् पुष्पकेण चरन् मुदा ॥३३॥
क्वचित्कालान्तरे धीमान् सुमाली राक्षसाधिपः । अप्रेषयद् दुहितरं पार्श्वं विश्रवसो मुनेः ॥३४॥
गताऽसौ नैकषी देवी पितुर्वचनकारिणी । ब्रह्मारण्यं महद्रम्यं तत्र वै विश्रवा मुनिः ॥३५॥

---

कार्तिक स्वामीले भन्नुभयो – मुनिहरूको यस्तो कुरा सुनेर ब्रह्माजीले आफ्ना नाति विश्रवालाई त्यस ठाउँमा बस्नका लागि निर्देशन दिनुभयो – हे बाबु ! पितृको उद्धार गर्ने, योगीहरूलाई सिद्धि दिने र दुनियाँको कामना पूर्ण गरिदिने मैले स्थापना गरेको लिङ्गमय ईश्वरको तिमीले पूजा गर्नेछौ । एक अहोरात्र म यहाँ बस्छु । स्वर्गमा देवताहरूलाई उपदेश दिएर जहाँसम्म आउन्न, त्यहाँसम्म तिमीले यस लिङ्गको संरक्षण गर्नुपर्नेछ ॥२४–२६॥

हे देवर्षिहरू हो ! तपाईंहरूले म यहीं बसेको सम्झनुहोला । राक्षसहरूले यहाँ तपस्या गर्नेछन् र शिवको अनुग्रहबाट आफ्नो कार्य सिद्ध गर्नेछन् । भाद्र कृष्ण चतुर्दशीको दिन लिङ्गको स्थापना गरी अमावास्याको दिन मुनि र देवताहरूलाई नमस्कार गरेर ब्रह्माजीले तीर्थभ्रमणका लागि प्रस्थान गर्नुभयो । यसरी नातिलाई लिङ्गको पूजा गर्ने आदेश दिएर ब्रह्माजी मुनिहरूका साथ स्वर्ग र शाश्वत ब्रह्मलोकतर्फ लाग्नुभयो ॥२७–२८½॥

भगवान् हरिणेश्वरको वचनको अनुसरण गर्दै विभिन्न पूजासामग्रीद्वारा गोकर्णेश्वर महादेवको लिङ्गलाई भक्तिपूर्वक पूजा गरेर बाँकी देवताहरू पनि स्वर्गतिर लागे । त्यसपछि कुबेरकी आमालाई साथमा लिएर विश्रवाले गोकर्णेश्वर भगवान्को पूजा गर्दै त्यहाँ त्यसबेला निरन्तर तपस्या गरे । कुबेरले पनि त्यस ठाउँमा भक्तवत्सल शिवजीको पूजा गर्दै बाह्र वर्षको उमेरदेखि पच्चीस वर्षको उमेरसम्म तपस्या गरे । नाच, गान, बजान र स्तुतिबाट कुबेरद्वारा प्रसन्न तुल्याइएका ब्रह्माले उनलाई स्वर्गतुल्य लङ्काको राज्य दिए ।त्यस ठाउँमा राक्षसका समूहद्वारा सेवित भएर कुबेरले पुष्पक विमान चढेर भ्रमण गर्दै हजार वर्षसम्म राज्य गरी बसे ॥२९–३३॥

केही समयपछि बुद्धिमान् सुमाली नाम गरेको राक्षसले विश्रवा मुनि भएको ठाउँमा आफ्नी छोरीलाई पठायो । बाबुको आज्ञाको अनुसरण गर्दै सुमाली राक्षसकी छोरी नैकषी अत्यन्त राम्रो विश्रवा मुनिले निवास गरेको ब्रह्मारण्य भन्ने ठाउँमा गई ॥३४–३५॥

---

८. इत्याकर्ण्य वचस्तेषां पितामहस्तदात्मजम्, इति न.सं.पु.पाठः ।
९. कौणपाद्ये तपयिष्यन्ति साधिष्यन्ति प्रसादतः, इति न.सं.पु.पाठः ।
१०. स्नापयन् स मुनीन् देवान् तीर्थे गन्तुं प्रचक्रमे, इति न.सं.पु.पाठः ।

कन्यां रूपवतीं प्रेक्ष्य तन्वङ्गीं सुपयोधराम्। धर्मेण वरयामास विधिवन्मुनिपुङ्गवः ॥३६॥
रराम स तया सार्द्धं काममोहवशङ्गतः। तुतोष नैकषी चापि लब्ध्वा विश्रवसं पतिम् ॥३७॥
सा च देवी विशालाक्षी स्वगर्भाच्च भयङ्करः[११]। सुषुवे नैकषी पुत्रं दशग्रीवं महाबलम् ॥३८॥
तस्य जननमात्रेण[१२] कम्पते धरणी भृशम्। मांसाभिलाषचपलाः पतन्ति पक्षिणो दिवः[१३] ॥३९॥
ववर्ष रुधिरञ्चैव मेघो घोरस्वरोऽभवत्। निष्प्रभश्चैव नित्यं स निशाकरो व्यजायत ॥४०॥
पुत्रं दशशिरोयुक्तं नीलाञ्जनचयप्रभम्। सम्प्राप्य विश्रवास्तत्र तुतोषातिशयं मुदा ॥४१॥
दशभिः कर्मभिर्युक्तो मन्त्रदानप्रदीक्षितः। कालेन वर्द्धयामास भ्रातृभिः सह तद्वपुः ॥४२॥
वीर्येण वयसा वापि संश्रितं रावणं पुनः। पुष्पकस्थो धनेशो वै द्रष्टुं तत्र समाययौ ॥४३॥
अद्राक्षीद्रावणस्तत्र पुष्पकेण समागतम्। तं दशशिरसं दृष्ट्वा सोऽपृच्छन् मातरं निजाम्[१४] ॥४४॥
विमानेनार्कवर्णेनऽऽगच्छन् कोऽस्तीति मां वद[१५]। स च कस्य सुतो मातः श्रोतुमिच्छामि साम्प्रतम् ॥४५॥
विमानं पुष्पकं पुण्यं केनोपायेन विद्यते। पुत्रस्य वचनं श्रुत्वा नैकषी चारुहासिनी ॥४६॥
अब्रवीन्मधुरं वाक्यं विस्मयोद्भूतमानसा।

नैकष्युवाच

तवाऽग्रजो ह्ययं पुत्र धनेशो लोकसम्मतः ॥४७॥
अर्जितं तपसाऽनेन विमानं पुष्पकं सुत। त्रैलोक्यमपि वश्यं स्याद्यदि पुत्र त्वमिच्छसि ॥४८॥

---

राम्री सुन्दर स्तन भएकी पातली त्यो सुन्दरीलाई देखेर ऋषिले विधिपूर्वक धर्म अनुसार विवाह गरे। ती मुनिले पनि कामदेवको अधीन हुँदै मोहित भएर राक्षसपुत्रीसित रमण गरे। राक्षसपुत्री पनि विश्रवालाई पतिका रूपमा पाएर सन्तुष्ट भइन् ॥३६–३७॥

विशाल आँखा भएका ती राक्षसीको गर्भबाट भयङ्कर बलियो दश टाउका भएको रावण पैदा भयो। त्यो जन्मनेबित्तिकै पृथिवीमा घोर कम्पन भयो र मासु खाने पक्षीहरू आकाशमा सानन्द घुम्न थाले। रगत बर्सियो, मेघ खूबसित गर्जन थाल्यो, चन्द्रमा ज्यादै फिका भए। दशवटा शिर भएको, गाजलजस्तो कालो कान्ति भएको छोरो पाएर विश्रवामुनिले हर्षले अत्यन्त गद्गद भएका उनी ज्यादै सन्तुष्ट भए। उनले मन्त्रदान गरेर दीक्षित तुल्याई दशै कर्महरू गराएर भाइहरूका साथ उसको पालनपोषण गरे ॥३८–४२॥

पराक्रमी र वयस्क रावणलाई हेर्न पुष्पक विमानमा बसेर कुबेर त्यहाँ आए। रावणले पुष्पक विमानबाट आएका कुबेरलाई त्यहाँ देख्यो र उसले आमालाई उनको बारेमा जिज्ञासा प्रकट गर्‍यो– हे आमा ! सूर्यजस्तै तेजिलो विमानमा चढेर आउन लागेको यो को हो ? मलाई भन्नुहोस्। त्यो कसको छोरो हो ? अब म सुन्न चाहन्छु। आफ्नो छोराको भनाइ सुनेर आश्चर्यले चकित हुँदै हँसिलो अनुहार लगाउने नैकषीले मीठो बोली बोली ॥४३–४६॥

नैकषीले भनी – हे छोरा ! यो लोकमा ख्यातिप्राप्त तिम्रो दाजु हो। तपस्या गरेर यसले पुष्पक विमान पाएको हो। हे छोरा ! यदि तिमी तीनै लोकलाई आफ्नो वशमा राख्न चाहन्छौ भने बाबुले भनेको मानेर गोकर्णेश्वर भगवान्‌को आराधना गर ॥४७–४८½॥

---

११. तस्या देव्या विशालाक्ष्या गर्भादेव भयङ्करः, इति न.सं.पु.पाठः।
१२. तस्य सञ्जातमात्रेण, इति न.सं.पु.पाठः।
१३. मांसाभिलाषिनिष्ठा ये पतन्ति दिवि पक्षिणः, इति न.सं.पु.पाठः।
१४. दृष्ट्वा दशशिराः श्रीमानपृच्छन्मातरं हि तम्, इति न.सं.पु.पाठः।
१५. आयन्तं को वदस्व मे, इति न.सं.पु.पाठः।
१६. आराध्यताम्, इति न.सं.पु.पाठः।

आराधय[16] पितुर्वाक्याद् गोकर्णं भुवनेश्वरम्। प्रार्थयत् स मनुं भक्त्या पितरं तस्य पूजने[17] ॥४९॥
लब्ध्वा मनुं पितू रक्षस्तपः कर्त्तुं प्रचक्रमे। भस्माङ्गी चैव रुद्राक्षी जजाप तन्मनुं मुदा ॥५०॥
सम्पूज्य विधिवद् भक्त्या तल्लिङ्गं राज्यलिप्सया। जुहोति स्म हविर्वह्नौ मन्त्रपूतं यथाविधि ॥५१॥
छित्त्वा छित्त्वात्मनः शीर्षं पूर्णाहुतिमकल्पयत्। दशवर्षसहस्रवर्षाणि तपस्तेपे दशाननः[18] ॥५२॥
शिवमन्त्रं जपन्नासीत् शिवात्मा स दशाननः[19]। आविर्भूतो महालिङ्गाद्रुदो दातुञ्च तद्वरम् ॥५३॥
ब्रह्मा तदाऽऽययौ तत्र वरं दातुं स्वलोकतः। व्याजहाराऽम्बराद्रुद्रस्तस्मै हि वचनं मुदा ॥५४॥
तपसा तस्य सन्तुष्टो[20] भगवान् भक्तवत्सलः।

गोकर्णेश्वर उवाच

वरं वरय भक्त त्वं रावण सुमहातपाः। तपसा ते कठोरेण सन्तुष्टोऽहं न संशयः ॥५५॥
दास्यामि साम्प्रतं तुभ्यं यत्ते मनसि वाञ्छितम्। दुष्प्राप्यमपि वीरार्य्य सर्वलोकसुदुर्लभम् ॥५६॥

रावण उवाच

ॐ नमः शिवाय भद्राय शङ्कराय नमो नमः। संसारसाररूपाय शम्भवे शूलिने नमः ॥५७॥
सर्वज्ञाय च रुद्राय रौद्ररूपाय ते नमः। ब्रह्मेश्वराय देवाय सर्वदाय नमो नमः ॥५८॥
गोकर्णाख्याय भीमाय भूम्ने चाऽगोचराय च[21]। पैतामहाय लिङ्गाय पितॄणां पतये नमः ॥५९॥
पराय परमेशाय परापरात्मने नमः। परब्रह्मस्वरूपाय पालकाय नतोऽस्म्यहम् ॥६०॥

---

त्यसपछि उसले भगवान् शङ्करको पूजाका लागि बाबुसित मन्त्र माग्यो । त्यस राक्षसले बाबुबाट मन्त्र प्राप्त गरेर तपस्या आरम्भ गर्‍यो। खरानी घसी रुद्राक्षको माला लगाएर विधिपूर्वक ईश्वरको लिङ्गमा भक्तिले पूजा गर्दै त्यस रावणले राज्यप्राप्तिका लागि शिवमन्त्र जप्यो। उसले आगोमा मन्त्रद्वारा पवित्र चरु विधिपूर्वक हवन गर्‍यो। आफ्ना टाउकालाई काटी काटी पूर्णाहुति दिन थाल्यो ॥४९–५१½॥

दश हजार वर्ष जाँदासम्म रावणले शिवस्वरूप भएर भक्तिपूर्वक तपस्या गर्‍यो। रावणलाई वर दिन महालिङ्गबाट रुद्र प्रकट हुनुभयो। ब्रह्माजी पनि वर दिन आफ्नो लोकबाट आउनुभयो। त्यसको तपस्याबाट सन्तुष्ट भएका भक्तवत्सल भगवान् रुद्रले आकाशबाटै भन्न लाग्नुभयो ॥५२–५४½॥

गोकर्णेश्वरले भन्नुभयो – हे भक्त ! हे रावण ! वर माग। तिम्रो कठिन तपस्याले गर्दा म सन्तुष्ट भएको छु, यसमा सन्देह छैन। सम्पूर्ण लोकले प्राप्त गर्न नसक्ने दुष्प्राप्य भए पनि तिम्रो मनमा इच्छा लागेको वर अहिले म तिमीलाई दिन्छु ॥५५–५६॥

रावणले भन्यो – शिवजीलाई नमस्कार छ। कल्याणकारी शङ्करलाई बारम्बार नमस्कार छ। संसारका साररूप भएका त्रिशूलधारी शम्भुलाई नमस्कार छ। सम्पूर्ण कुरा जान्ने रौद्रस्वरूप भएका रुद्र तपाईंलाई नमस्कार छ। सम्पूर्ण कुरा दिन सक्ने ब्रह्मेश्वर देवतालाई बारम्बार नमस्कार छ। गोकर्ण नाम गरेका, डरलाग्दा, अगोचर, पूजनीय ब्रह्माले स्थापना गरेका पितृपति लिङ्गलाई नमस्कार छ। सर्वोत्तम परमेश्वर, पर तथा अपरस्वरूप भएका ईश्वरलाई नमस्कार छ। परब्रह्मस्वरूप भएका संसारका पालकलाई म नमस्कार गर्दछु ॥५७–६०॥

---

१६. आराध्यताम्, इति न.सं.पु.पाठः।
१७. पितरि तस्य पूजनम्, इति न.सं.पु.पाठः।
१८. वर्षाणां हि सहस्राणि दशपूर्णे दशाननः, इति न.सं.पु.पाठः।
१९. एतत्कालमसौ तेपे भक्त्या तत्र शिवात्मना, इति न.सं.पु.पाठः।
२०. तत्तपसा प्रसन्तुष्ये, इति न.सं.पु.पाठः।
२१. अगोचराय भूमिने, इति न.सं.पु.पाठः।

भक्तेभ्यो वरदेशाय[२२] व्यक्ताङ्गधारिणे नमः। वक्तवत्सल देवेश सर्वात्मने नमो नमः ॥६१॥
यदि चेन्मे हि दातव्यो वरो[२३] भगवता ध्रुवम्। याचेऽहं तद्वरं त्वां हि यद्वाञ्छितं हृदा मम ॥६२॥
त्रैलोक्ये संश्रिता लोकास्तिष्ठन्तु मम शासने। देवासुरैरवध्यश्च तदुद्भवैः तथा परैः ॥६३॥

स्कन्द उवाच

ततश्चाकर्ण्य तत्प्रोक्तं स्वीकारं कृतवान् विभुः। कौणपाय वरं दत्वा तल्लिङ्गेऽन्तर्दधे ध्रुवम् ॥६४॥
ब्रह्माऽपि प्रददौ भूयः प्रपौत्राय वरोत्तमम्। आपञ्चाशद्युगं त्वञ्च राज्यं सुखेन भोक्ष्यसि ॥६५॥
ब्रह्माऽप्यन्तर्दधे तत्र दत्त्वा वरं स्वसेविने[२४]। श्रुत्वा लब्धवरं तत्र चाययुस्तं हि राक्षसाः ॥६६॥
सुमाली माल्यवाँश्चैव प्रहस्तश्च तथाऽपरे। रावणञ्च मुदालोक्य लब्धवरमपूपुजन् ॥६७॥
अमन्त्रयत्तदा तत्र रावणो राक्षसैः सह। राज्यं कर्त्तुञ्च लङ्कायां[२५] रुद्राजवरदर्पितः ॥६८॥
राजनीतिविशेषज्ञो माल्यवानब्रवीत्तदा। गन्तुकामः पुरीं लङ्कां सभामध्ये यदृच्छया ॥६९॥
दिव्या सा नगरी लङ्का स्वर्णमयी विराजिता[२६]। राक्षसेश्वर ते योग्या यस्यां तिष्ठति यक्षराट् ॥७०॥
यदि तु रोचते तुभ्यं राज्यं कर्तुं सुखेन च। सा सुवर्णमयी लङ्का गन्तव्या कौणपेश्वर[२७] ॥७१॥
ततो निशम्य तद्वाक्यं माल्यवतो दशाननः। आहूय सर्वसैन्यानि प्रतस्थे तत्र तत्क्षणम्[२८] ॥७२॥
परित्यज्य ययौ रक्षो मञ्जुलान्तदुपत्यकाम्। उपलङ्कं सुवेलाद्रिं रत्नाकरतटाश्रितम् ॥७३॥
सुवेलं स समासाद्य दूतं प्रहितवान् द्रुतम्[२९]। तस्यां प्रविश्य दूतोऽसौ धनेशमब्रवीत्तदा ॥७४॥

---

हे भक्तलाई वरदान दिनसक्ने ईश्वर ! व्यक्त शरीरधारण गर्ने हजुरलाई नमस्कार छ। हे भक्तवत्सल ! हे देवेश ! सबै प्राणीका आत्मा हजुरलाई नमस्कार छ। यदि हजुर मलाई वरदान दिन चाहनुहुन्छ भने मेरो हृदयमा जे लागेको छ, त्यो वर म हजुरसित माग्दछु। तीनै लोकमा रहेका सम्पूर्ण प्राणीहरू मेरा अधीनमा बसून्, म देवता राक्षस तथा तिनीहरूबाट पैदा भएका सन्तान र अरूबाट पनि अवध्य बनूँ ॥६१–६३॥

कार्तिक स्वामीले भन्नुभयो – त्यसपछि रावणले भनेको कुरालाई भगवान्ले स्वीकार गर्नुभयो र राक्षसलाई वर दिएर उहाँ त्यसै लिङ्गमा अन्तर्धान हुनुभयो। ब्रह्माजीले पनि पचास युगसम्म सुखपूर्वक तिमी राज्यभोग गर्न पाउनेछौ भनेर आफ्ना नातिलाई उत्तम वर दिनुभयो। ब्रह्माजी पनि आफ्ना भक्तलाई वर दिएर त्यसै ठाउँमा अन्तर्धान हुनुभयो ॥६४–६५½॥

रावणले वर पाए भन्ने सुनेर राक्षसहरू उसलाई भेट्न त्यहाँ आए। सुमाली, माल्यवान्, प्रहस्त र अरू राक्षसहरूले वर प्राप्त गर्ने रावणलाई देखेर प्रसन्न भई पूजा गरे। त्यसबेला शिवजी र ब्रह्माजीबाट वर पाएर उन्मत्त भएको रावणले राक्षसहरूलाई लङ्कामा राज्य गर्ने विषयमा सरसल्लाह गर्‍यो। राजनीतिका बारेमा विशेष जानकारी राख्ने माल्यवान्ले सभाको बीचमा भन्यो – हे राक्षसराज ! जहाँ आज कुबेरले शासन गरेका छन्, त्यो सुनैसुनले बनेको लङ्का शहर तपाईंको उपभोगका लागि उपयुक्त छ। हे राक्षसराज ! यदि तपाईंलाई आनन्दसित राज्य गर्ने इच्छा छ भने रत्न र सुवर्णले बनाएको लङ्का नगरमा जानु उपयुक्त हुन्छ ॥६६–७१॥

माल्यवान्को भनाइ सुनेर रावणले सबै सेनालाई बोलायो र लङ्कातिर तुरुन्त प्रस्थान गर्‍यो। त्यो राक्षसराज पनि सुन्दर उपत्यका छाडेर समुद्रको किनारमा रहेको लङ्काको निकटवर्ती सुवेल नाम गरेको पर्वतमा गयो। सुवेल पर्वतमा पुगेर त्यस राक्षसले दूत पठायो। त्यसपछि दूतले त्यहाँ गएर कुबेरलाई भन्यो ॥७२–७४॥

---

२२. वरदानेश, इति न.सं.पु.पाठः।
२३. दातव्यं वरम्, इति न.सं.पु.पाठः।
२४. स्वभक्तिने, इति न.सं.पु.पाठः।
२५. लङ्कां वै, इति न.सं.पु.पाठः।
२६. दिव्यां तां नगरीं लङ्कां स्वर्णमयीं विराजिताम्, इति न.सं.पु.पाठः।
२७. रत्नसुवर्णमयां वै गन्तव्यं कौणपेश्वर, इति न.सं.पु.पाठः।
२८. सांप्रतम्, इति न.सं.पु.पाठः।
२९. प्रेषयादाशु वै, इति न.सं.पु.पाठः।

दूत उवाच

शृणु कुबेर तद्वाक्यं यदुक्तं रावणेन ते। अस्ति चेज्जीवितुं कामः कुबेरेमां पुरीं त्यज ॥७५॥
एताञ्च राजधानीं वै भोक्तुं वाञ्छसि साम्प्रतम्। एतस्याश्चाऽधिकारी स रावणो द्वारि चाऽप्तवान् ॥७६॥

स्कन्द उवाच

इत्याकर्ण्य वचस्तस्य दूतस्याशु धनेश्वरः। मुमूर्च्छ च रुषाऽऽविष्टः सभामध्ये व्यवस्थितः ॥७७॥

कुबेर उवाच

विकटास्य श्रुतं त्वत्तो वचो सज्जनगर्हितम्[३०]। दशास्योऽहञ्च कृत्वेति जल्पसे त्वं रुषाश्रितः ॥७८॥
नाऽहं भीषयितुं शक्यो दशास्य पौरुषेण ते। निःसृतोऽहं पुराद्योद्धुं कोपिना सह साम्प्रतम् ॥७९॥
वदैतद्वचनं दूत[३१] दशास्याय प्रकोपिने। भुनज्मि लङ्काराज्यं वा[३२] त्वां प्रशाम्याऽधुनाऽथ वा ॥८०॥

स्कन्द उवाच

ततश्चाऽदाय सन्देशं निधिपतेः मुखाच्च्युतम्। तत्सर्वमब्रवीद् दूतो रावणायान्तिकं व्रजन् ॥८१॥
निशम्य वचनं दूतात् कटुकं कर्णविप्रियम्। चुकोप रावणोऽत्यन्तं ज्वालाग्निः सर्पिषा यथा ॥८२॥
ततो[३३] विनिर्ययौ द्वारात् सह सैन्यैर्धनाधिपः। युद्धार्थं राक्षसैः सार्द्धं पुष्पकस्थो महोज्वलः ॥८३॥
अभूद्युद्धं महत्तत्र सैन्ययोरुभयोर्भृशम्। नानावाद्योद्भवैर्नादैः कोलाहलो महानभूत्[३४] ॥८४॥
रथस्था रथिभिः सार्द्धं पदातयः पदातिभिः। शस्त्रास्त्रैर्मुहुरुद्दिश्य मिथो जघ्नुर्भृशं रणे ॥८५॥

---

हे कुबेर ! रावणले जे कुरा भन्न भनेर मलाई पठाउनुभएको छ त्यो कुरा सुन– हे कुबेर ! तिमीलाई बाँच्ने इच्छा भने यो शहर छाड। यो शहरमा रावणले राज्यभोग गर्न खोज्नुभएको छ। यसको अधिकारी रावण ढोकामा आइसक्नुभएको छ ॥७५–७६॥

कुमार स्वामीले भन्नुभयो – दूतले भनेको वचन सुनेर कुबेर तुरुन्त सभाकै बीचमा क्रुद्ध हुँदै मूर्च्छा परे ॥७७॥

कुबेरले भने – सज्जनलाई उपहास गर्ने विकाटस्यको यो बोली सुन – दश टाउका भएको छु भनेर रीसले त्यसै यो उफ्रन्छ। हे रावण ! तेरो पुरुषार्थले म डराउँदिन, अहिले नै रिसाहा तँसित लड्न शहरबाट निस्कन्छु। हे सूक नाम गरेका दूत ! तिमी गएर रिसाहा रावणलाई यही कुरा भन– म तिमीलाई तह लगाएर लङ्काको सुख अथवा राज्यभोग गर्छु ॥७८–८०॥

कार्तिक स्वामीले भन्नुभयो – त्यसपछि कुबेरको मुखबाट निस्किएको सन्देश लिएर दूत रावणको नजिकै गयो र सबै कुरा उसलाई बतायो। दूतको मुखबाट कुबेरको कर्णकटु बोली सुनेर घिउले आगाको ज्वाला दन्किए झैँ रावण अत्यन्त रिसायो। त्यो दूत गएपछि राक्षस सेनाहरूलाई साथमा लिएर अत्यन्त उज्यालो पुष्पक विमानमा बसेर लड्नका लागि कुबेर शहरको ढोकाबाट तुरुन्त निस्किए। ती दुई सेनाको बीचमा त्यहाँ निरन्तर ठूलो युद्ध भयो। फेरि विभिन्न बाजाबाट निस्किएका शब्दले कोलाहल मच्चियो। त्यस युद्धमा रथारोही सेनाहरूले रथीका साथ, पैदल सेनाहरूले पैदल सेनाका साथ शस्त्र र अस्त्रहरूद्वारा परस्पर लक्ष्य गरेर खूबसित हानाहान गरे ॥८१–८५॥

---

३०. वचो यूयं शृणुत सतो गर्हणम्, इति न.सं.पु.पाठः।
३१. सूक, इति न.सं.पु.पाठः।
३२. भोज्ये लङ्कां सुखं राज्यम्, इति न.सं.पु.पाठः।
३३. तस्मिन्, इति न.सं.पु.पाठः
३४. कोलाहलमभूत्पुनः, इति न.सं.पु.पाठः।

पुष्पकस्थः कुबेरोऽपि गदया सत्वरं रुषा। जघान कौणपान् योधान् यानमर्दयत्समन्ततः ॥८६॥
रावणोऽपि स्वसैन्यानि मर्द्दयन्तं ददर्श तम्। अमर्षैः पूरितो रक्षो हन्तुं ब्रह्मास्त्रमाददे ॥८७॥
अब्रवीदनिलो व्योम्नो धनदं श्रवणे हि सः। मा योद्धव्यं कुबेराद्य महेशवरभूतिना ॥८८॥
ब्रह्मास्त्रयोजनो[३५] रक्षो ह्यजेयस्त्रिदशैरपि। त्यक्त्वेमां नगरीमन्यां गच्छ जीवन् हि साम्प्रतम्[३६] ॥८९॥
निशम्य वचनं वायोर्गुह्यकेशः सुसम्भ्रमः। प्रत्याययौ पुरीं भूयः सैनिकैः[३७] सह साम्प्रतम् ॥९०॥
संस्थाप्य पुष्पके योधान्[३८] पदार्थान् गुह्यकेश्वरः। त्यक्त्वा लङ्कां पुरीं व्योम्ना ययौ विश्रवसोऽन्तिकम् ॥९१॥
गोकर्णेशः स्थितो यत्र गत्वा पित्रे निवेदिता। हिमाद्रिशिखरे सर्वा तच्चेष्टा गुह्यकेन वै[३९]।
तच्चेष्टाञ्च समाकर्ण्य रावणस्य धनाधिपात् ॥९२॥
समाश्वास्य च पौलस्त्यं व्याचष्ट विश्रवा वचः। मा दुःखी भव त्वं पुत्र[४०] प्राप्तव्यं तपसः फलम् ॥९३॥
तस्मै तपस्विने रुद्रो ददौ तपःफलं महत्[४१]। आराधयेश्वरं वत्स हिमवच्छेखरे ततः ॥९४॥
आशुतोषः फलं शीघ्रं ते दास्यति न संशयः। ययौ मुदा तपस्तप्तुं स्वर्णकूटे हिमाचले ॥९५॥
पितुर्वाक्यमिति श्रुत्वा धनेशः सह गुह्यकैः ॥९६॥

स एव दिक्पालवरोऽभवद्वै चाऽद्याप्युदीच्यां दिशि सर्वकर्त्ता।
वरञ्च लब्ध्वा गिरिशप्रसादाज्ज्ञानाख्यतीर्थे सलिलाप्लवाद्वै ॥९६॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे रावणतपःसिद्धिर्नामपञ्चाशीतितमोऽध्यायः ॥८५॥

---

पुष्पक विमानमा रहेका कुबेरले पनि रीसले राक्षसका सैन्यहरूलाई सबैतिरबाट तुरुन्त प्रहार गरे, गदाले हिर्काए र चारैतिरबाट सैन्यको भेदन गरे। रावणले पनि आफ्ना सैन्यहरूलाई मार्न लागेको कुबेरलाई देखेर रीसले चूर हुँदै हिर्काउनका लागि ब्रह्मास्त्र समात्यो। आकाशमा रहेका वायु देवताले कुबेरको कानमा भने – हे कुबेर ! महेश्वरको वर दान पाएको रावणसित नलड। हे कुबेर ! शिवजीको वरले गर्दा उन्मत्त भएर ब्रह्मास्त्र छोड्न लागेको यस राक्षसलाई देवताहरूले पनि जित्न सक्दैनन्। त्यसैले अर्को कुनै शहरमा गएर जीवनको रक्षा गरी आनन्दसित बस। यो लङ्का शहर छोड ॥८६–८९॥

वायुको यो कुरा सुनेर कुबेर हडबडाउँदै आफ्ना सेनाहरूलाई साथमा लिएर लङ्का शहरमा फर्किए। कुबेरले पुष्पक विमानमा सम्पूर्ण सेना र पदार्थहरूलाई राखेर लङ्का शहर छोडी आकाशमार्गबाट विश्रवाको नजिकै गए। अत्यन्त दुःखी भएर उनले हिमालय पर्वतको शिखरमा रहेको गोकर्णेश्वर भगवान् बस्नुभएको ठाउँमा गएर आफ्ना बाबुलाई रावणले गरेका सम्पूर्ण क्रियाकलापहरू बताए ॥९०–९१½॥

कुबेरबाट रावणका सम्पूर्ण क्रियाकलापहरू सुनेर विश्रवाले कुबेरलाई आश्वासन दिँदै भने– हे छोरा ! दुःख नमान, तपस्याको फल अवश्य प्राप्त हुन्छ, भगवान् शङ्करले तपस्वी त्यस रावणलाई तपस्याको फल दिनुभएको छ। हे बाबु ! हिमालयको शिखरमा बसेर भगवान् शङ्करको आराधना गर। आशुतोष भगवान् शङ्करले तिमीलाई पनि चाँडै नै तपस्याको फल दिनुहुनेछ, यसमा शङ्का छैन ॥९२–९४½॥

त्यसपछि बाबुको भनाइ सुनेर कुबेर यक्षहरूलाई साथमा लिएर प्रसन्न हुँदै हिमालयको स्वर्णकूटमा तपस्या गर्न गए। तिनै कुबेर ज्ञानतीर्थमा स्नान गरेर भगवान् शिवजीबाट वर प्राप्त गरी उत्तर दिशाका पालक तथा दिक्पाल बन्न पुगे ॥९५–९६॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा रावणको तपःसिद्धिनामक पचासियौं अध्याय पूरा भयो।

---

३५. ब्रह्मास्त्रयोजितः, इति न.सं.पु.पाठः।
३६. त्यज्यैमा नगरीमन्यं गच्छ जीवन् हि सुस्थितम्, इति न.सं.पु.पाठः।
३७. आनीकैः, इति न.सं.पु.पाठः।
३८. सैन्यान्, इति न.सं.पु.पाठः।
३९. सर्वं तच्चेष्ट्य दीनशोभनः, इति न.सं.पु.पाठः।
४०. मा मा दुःखय पुत्र त्वम्, इति न.सं.पु.पाठः।
४१. तेन तपस्विने रुद्रो ह्यवश्यं दास्यते फलम्, इति न.सं.पु.पाठः।

# षडशीतितमोऽध्यायः

## दक्षिणगोकर्णेश्वरमाहात्म्यम्

### स्कन्द उवाच

ततः स्वर्णमयीं लङ्कां प्रविवेश दशाननः। स्वसैन्यैर्मन्त्रिभिः सार्द्धं मुमुदे तत्र वै सुखम् ॥१॥
प्राप्ताभिषेको लङ्कायां[1] सरक्षोभिर्महोत्सवैः। सम्मन्त्र्य मन्त्रिभिः सार्द्धं युद्धोद्योगञ्चकार वै ॥२॥
गतो यक्षपुरीं[2] पूर्वं रावणो राक्षसैः समम्। आदाय पुष्पकं जित्वा गुह्यकानगमत्ततः ॥३॥
धनदस्य पुरीं जित्वा पातालमविशत्पुनः। प्रयुयोधासुरैः सार्द्धं निर्जित्य सहसा स तान् ॥४॥
अनन्तभवनं प्रेक्ष्य सर्वरत्नोपशोभितम्। मुमोद रावणस्तत्र जिघृक्षू रत्नसम्पदः ॥५॥
रत्नजिघृक्षुणा सार्द्धं फणिनो[3] युयुधुर्भृशम्। सहस्रवदनस्तत्र तमालोक्य चुकोप हि ॥६॥
उच्छ्वश्वास सहस्रास्यः तच्छ्वासेन स कोपितः। उद्धूतं रावणसैन्यं सहस्रयोजनञ्च तत् ॥७॥
दीनमुखः ससैन्योऽसौ शक्रपुरीं ययौ पुनः। देवेन्द्रं प्रार्थयामास युद्धायाऽऽशु दशाननः ॥८॥
जित्वा शक्रं महायुद्धे[4] मेघनादस्य मायया। दशाननः समं सैन्यैः प्रविवेशाऽमरावतीम् ॥९॥
लिङ्गं हि हारिणं प्रेक्ष्य पूजितं वज्रपाणिना। उत्पाट्य च करे कृत्वा मुमुदेऽतिशयं तदा ॥१०॥
शतेनाऽप्सरसां[5] सार्द्धं रत्नानि सुबहूनि च। गृहीत्वा स्वबलैः सार्द्धं प्राप्तवाँश्च महोदधिम् ॥११॥

---

## अध्याय – ८६

### दक्षिणगोकर्णेश्वरको माहात्म्य

कार्तिक स्वामीले भन्नुभयो – कुबेरले लङ्का छोडेपछि रावण सुवर्णमय लङ्कामा प्रवेश गऱ्यो र त्यहाँ आफ्ना सेना र मन्त्रीहरूका साथ आनन्द मान्दै सुखपूर्वक बस्यो। त्यस नगरीमा राज्याभिषेक पाएको त्यस राक्षसले अरू राक्षसहरूका साथ ठूलो उत्सव गर्दै मन्त्रीहरूसित सल्लाह गरेर युद्ध गर्ने उद्योग गर्न थाल्यो। सर्वप्रथम रावणले राक्षसहरूलाई साथमा लिएर यक्षहरूलाई जिती पुष्पक विमान लिएर लङ्का फर्कियो। कुबेरको राजधानीलाई जितेर फर्केको रावण राक्षसहरूका साथ पातालमा प्रवेश गऱ्यो, त्यहाँ उसले असुरहरूसित युद्ध गऱ्यो, तिनीहरूलाई जितेर उसले सम्पूर्ण रत्न युक्त भएको अनन्त अर्थात् शेषनागको भवनलाई देख्यो। त्यहाँबाट रत्न र अन्य सम्पत्ति लिने विचारले अत्यन्त प्रसन्न भयो ॥१-५॥

रत्न लिने इच्छाले अनन्त नाम गरेका नागराजसित उसले खूब युद्ध गऱ्यो। त्यो देखेर हजार मुख भएका नागराज अत्यन्त रिसाए। नागराजले लामो श्वास फेरे, तिनको श्वासले गर्दा रावण झन् क्रुद्ध भयो। रावणको सेना हजार योजन पर पुग्यो। त्यसपछि हारेर निन्याउरो मुख लगाएको रावण सेनालाई साथमा लिएर इन्द्रको शहरमा गयो र उसले इन्द्रसित तुरुन्त लड्न आऊ भन्दै युद्धको आह्वान गऱ्यो। मेघनादको मायाको प्रयोग गरेर ठूलो युद्धमा रावणले इन्द्रलाई जित्यो र सेनाहरूका साथ अमरावती शहरमा प्रवेश गऱ्यो। त्यसले इन्द्रद्वारा पूजित हरिणको सिङको लिङ्गलाई देख्यो र त्यसलाई उखेलेर हातमा लियो। त्यसपछि ऊ अत्यन्त खुसी भयो। सयवटी अप्सराका साथै धेरै रत्नहरू लिएर आफ्नो सेनहरूका साथ रावण समुद्रमा आयो ॥६-११॥

---

१. राज्याभिषेचितस्तस्याम् इति न.सं.पु.पाठः।
२. ततो लङ्कां ययौ इति न.सं.पु.पाठः।
३. फणितो इति न.सं.पु.पाठः।
४. महद्युद्धे इति न.सं.पु.पाठः।
५. शतमप्सरसाम् इति न.सं.पु.पाठः।

दक्षिणोदधिवेलोर्मिमालावलिसुमण्डिते। विद्रुमद्रुमसङ्घाते सन्ध्यासमयसन्निभे ॥१२॥
मुक्तागुटिकसङ्कीर्णे रत्नोपलविभूषिते। नागदानवनारीणां क्रीडास्थाने मनोरमे ॥१३॥
शृङ्गाग्रं हारिणं पुण्यं सुरेन्द्रभवनाहृतम्। त्रिकूटमूले संस्थाप्य सन्ध्यामास्ते दशाननः ॥१४॥
सन्ध्यावन्दननिर्वृत्तो रावणो लोकरावणः। न शशाक तदुद्धर्तुं वज्रकल्पमिव स्थितम् ॥१५॥
शृङ्गाग्रं हारिणं दृष्ट्वा वज्रकल्पमिव स्थितम्। तत्[६] त्यक्त्वा स्वपुरीं लङ्कां प्रविवेश दशाननः ॥१६॥
अथ हृष्टमना भूत्वा रावणो रुद्रभक्तिमान्। निर्ममे निलयं तस्य रत्नतोरणदीपितम् ॥१७॥
गोकर्णमेव सङ्कल्प्य पूजनाद्रावणेन वै। स च दक्षिणगोकर्ण इति विख्यायते भुवि ॥१८॥
अद्यापि पूज्यते[७] भक्त्या राक्षसैर्धर्मकाङ्क्षिभिः। नित्यमेव समागत्य नानोपहारकैर्मुदा ॥१९॥
विभीषणोऽपि चाऽऽगत्य पूजयति तमीश्वरम्। लब्धवरः शिवाद्यत्र पञ्चोपचारकैः सदा ॥२०॥
यत्र लब्धो वरो[८] पूर्वं वज्रनाभेन तीर्थके। तत्रैव स तपः कृत्वा विभीषणोऽमरोऽभवत् ॥२१॥
इन्द्रोऽपि भगवान् स्वर्गे ब्रह्मणा भूरितेजसा। अभिषिक्तः स्वयं राज्यं पालयामास चोत्सवैः ॥२२॥
अथ वक्षाम्यहं भूयो माहात्म्यं तस्य शूलिनः। यो गच्छति नरस्तत्र यत्र गोकर्णशङ्करः ॥२३॥
पथि गमनमात्रेण द्रष्टुं तमीश्वरं परम्[९]। इहजन्मकृतैः पापैः स मुक्तो हि न संशयः ॥२४॥
कदाचिद्दैवयोगेन यः पश्यति तमीश्वरम्। सप्तजन्मकृतैः पापैर्विमुक्तः परमं व्रजेत् ॥२५॥
यः संस्पृशति[१०] तल्लिङ्गं तदात्मा भक्तितो नरः। सर्वपापैर्विनिर्मुक्तः परमं तं समासते ॥२६॥

---

दक्षिणको समुद्रको अत्यन्त सुन्दर तरङ्गले युक्त भएको, मुगाका रुखहरू लहर पर्नाले सन्ध्याजस्तो देखिने, मोतीको गुच्छा र रत्नका कमलहरूले सुशोभित भएको, नाग तथा राक्षसका सुन्दरी स्त्रीहरूको क्रीडास्थल भएको त्रिकूट पर्वतको फेदीमा स्वर्गबाट हरण गरेर ल्याएको मृगको सिङलाई राखेर रावण सन्ध्या गर्न थाल्यो। सन्ध्यावन्दनको कार्य सम्पन्न गरेर आएको दुनियाँलाई रुवाउने रावणले वज्रजस्तै भएर रहेको त्यस लिङ्गलाई उखेल्न सकेन। हरिणको सिङको अग्रभागलाई वज्रजस्तै भएर रहेको देखी त्यसलाई त्यहीँ छोडेर रावण लङ्का गयो। यसपछि रुद्रभक्त रावणले अत्यन्त खुसी हुँदै त्यहाँ रत्नका तोरणले चम्किलो भएको मन्दिर बनायो ॥१२–१७॥

गोकर्ण नै भनेर रावणले सङ्कल्प गरी पूजा गरेको हुँदा त्यो दक्षिणगोकर्णको नामले पृथ्वीमा प्रसिद्ध भयो। आज पनि धर्म गर्न चाहने राक्षसहरूले विभिन्न सामग्रीहरू लिएर सहर्ष त्यहाँ आई भक्तिपूर्वक सधैँ पूजा गर्छन्। शिवजीबाट वर प्राप्त गर्ने विभीषण पनि त्यहाँ आएर पञ्चोपचारले भगवान् शिवजीको सधैँ पूजा गर्छन्। जुन तीर्थमा अघि वज्र नामले वर पाएका थिए, त्यसै तीर्थमा तपस्या गरेर विभीषण अमर भए ॥१८–२१॥

अत्यन्त तेजस्वी ब्रह्माजीले पनि स्वर्गमा भगवान् इन्द्रलाई अभिषेक गर्नुभएको थियो। स्वयं इन्द्रले पनि बडो उत्सवका साथ राज्यको सञ्चालन गरेका थिए। अब म फेरि भगवान् शङ्करको माहात्म्य बताउँछु। जुन मानिस भगवान् गोकर्णेश्वर महादेवको दर्शन गर्न जान्छ अथवा दर्शन गर्नका लागि बाटो लाग्छ, त्यो व्यक्ति यो जन्ममा गरेका पापबाट मुक्त हुन्छ, यसमा शङ्का छैन। जसले संयोवश गोकर्णेश्वर भगवान्को दर्शन गर्छ, त्यो व्यक्ति सात जन्मसम्म गरेका पापबाट मुक्त भएर परमपदमा पुग्छ। जुन मानिसले शिवको आत्मस्वरूप भएको गोकर्णेश्वर महादेवको लिङ्गलाई स्पर्श गर्छ, त्यो व्यक्तिले सम्पूर्ण पापबाट मुक्त भएर परमपद पाउँछ ॥२२–२६॥

---

६. तम् इति न.सं.पु.पाठः।
७. पूजत इति न.सं.पु.पाठः।
८. लब्ध वरम् इति न.सं.पु.पाठः।
९. तमीश्वरं प्रदर्शितुम् इति न.सं.पु.पाठः।
१०. संस्पृश्यति इति न.सं.पु.पाठः।

जप्योपहारकैर्दिव्यैर्भक्तः पूजति यो हि तम्। नैव पुनर्भवस्तस्य जायते लीयते परे[११] ॥२७॥
अद्यापि च भवेयुस्ते राक्षसा हि महाबलाः। तमेवाश्रित्य गोकर्णं दक्षिणाख्यं प्रपूजनात् ॥२८॥
हारिणस्य प्रवक्ष्यामि माहात्म्यमद्भुतं तथा। विष्णुना स्थापितं पूर्वं बलिसद्मनि तस्य च ॥२९॥
वासुकिर्नागराजेन्द्रो नित्यमर्चीति हारिणम्। शृङ्गेश्वरं मुदा भक्त्या नानोपहारपूजनैः ॥३०॥
तस्माद्वरोत्तमं प्राप्य शृङ्गेश्वरप्रपूजनात्। दधार भूधरो क्षोणीमद्यापि पन्नगेश्वरः ॥३१॥
बलिश्चाप्यनिशं भक्त्या तमर्चीति च हारिणम्। तस्माद् वरोत्तमं[१२] लब्ध्वा राज्यं करोति तत्र वै ॥३२॥
तमर्चीति सदा भक्त्या विष्णुर्महोत्सवैर्मुदा। पाताले प्रवसन्सार्द्धं सन्धार्य बलिना महीम् ॥३३॥
सलोमा कालनेमिश्च हिरण्यकशिपुस्तथा। अनुह्लादश्च संह्लादो निकुम्भो हि महाबली ॥३४॥
इत्यादिभिः सदा दैत्यैः पूज्यते हारिणेश्वरः। नानोपहारकैर्दिव्यैर्भक्त्या जपैस्तवार्चनैः ॥३५॥
एते दैत्या महावीराः सप्त रसातलानि वै। दधति न्यायतोऽद्याऽपि शृङ्गेश्वरप्रसादतः ॥३६॥
तत्रस्थाःसुखिनो नित्यं सर्वलोका भवन्ति वै। शृङ्गेश्वरप्रसादाच्च यैर्यैर्दृष्टः स ईश्वरः[१३] ॥३७॥
ये शृण्वन्तीममध्यायं[१४] हारिणानां प्रशंसनम्। भक्त्या भूत्वा तदात्मानस्तेषां[१५] पुण्यफलं शृणु ॥३८॥
यावन्नैव श्रुतं लोकैर्माहात्म्यं हारिणस्य च। तावत्कृतेभ्यः पापेभ्यो[१६] मुच्यन्ते श्रवणात् क्षणात् ॥३९॥
धनं धान्यं सुताञ्जायां प्रभुत्वञ्च सुदुर्लभम्। प्राप्नुवन्ति च तत्सर्वमेतन्माहात्म्यमोदिताः ॥४०॥

---

जुन भक्तले जप, भेटी आदि चढाएर गोकर्णेश्वर महादेवको पूजा गर्छ, त्यसले फेरि जन्म लिनुपर्दैन, त्यो व्यक्ति ईश्वरमा गएर लीन हुन्छ। आज पनि दक्षिणगोकर्णको पूजा गरी उहाँकै आश्रय लिएर राक्षसहरू अत्यन्त बलियो भएका छन् ॥ अब म भगवान् विष्णुले अघि पातालमा लगेर स्थापना गर्नुभएको हरिणका सिङको अद्भुत माहात्म्य बताउँछु। पातालमा वासुकि नाम गरेका नागराज हरिणको सिङबाट बनेका महादेवलाई विभिन्न पूजासामग्रीद्वारा भक्तिपूर्वक प्रसन्न भएर सधैं पूजा गर्छन् ॥२७–३०॥

शृङ्गेश्वरको पूजा गर्नाले शिवजीबाट वर प्राप्त गरेर आज पनि नागराज पर्वतमय पृथ्वीलाई धारण गरिरहेका छन्। बलि पनि हरिणरूपी मृगको सिङबाट बनेको लिङ्गलाई भक्तिपूर्वक पूजा गर्छन्। तिनै भगवान्‌बाट वर प्राप्त गरेर उनी पातालमा राज्य गर्छन्। भगवान् विष्णुले पनि बलिका साथै पातालमा बसेर पृथ्वीलाई धारण गर्दै ठूलो उत्सवका साथ प्रसन्न भएर भक्तिपूर्वक त्यस लिङ्गको पूजा गर्नुहुन्छ। प्रशस्त रौं भएको कालनेमि, हिरण्यकशिपु, अनुह्लाद, संह्लाद र महाबली निकुम्भ आदि दैत्यहरू विभिन्न उपहार, जप, पूजा, स्तुति आदि गरेर भक्तिपूर्वक शृङ्गेश्वर महादेवको आराधना गर्दछन्। शृङ्गेश्वर भगवान्‌का अनुग्रहले महावीर दैत्यहरू आज पनि न्यायपूर्वक सातै पातालमा शासन गर्दै छन् ॥३१–३६॥

ज–जसले ती भगवान्‌को दर्शन गरे, ती सबै र त्यहाँ बस्ने व्यक्तिहरू शृङ्गेश्वर भगवान्‌को अनुग्रहले गर्दा सुखी भएका छन्। जसले शृङ्गेश्वर महादेवको माहात्म्यसँग सम्बद्ध यो अध्याय भक्तिपूर्वक सुन्छन्, तिनीहरूले कस्तो पुण्यफल पाउँछन्, सुन्नुहोस्। शृङ्गेश्वर महादेवको माहात्म्य सुन्नासाथ मानिसहरू त्यस अगाडिका सम्पूर्ण पापहरूबाट मुक्त हुन्छन्। यो माहात्म्य सुन्नाले धन, धान्य, सन्तान, पत्नी र जो कोहीले प्राप्त गर्न नसक्ने स्वामित्व सबैथोक प्राप्त हुन्छ ॥३७–४०॥

---

११. नैव पुनर्भवं तस्य कार्यं लीनं भवेत् परे इति न.सं.पु.पाठः।
१२. तस्माद्वरं स मे इति न.सं.पु.पाठः।
१३. यैर्यैर्दृष्ट तमीश्वरम् इति न.सं.पु.पाठः।
१४. ये शृण्वन्ति तमध्यायम् इति न.सं.पु.पाठः।
१५. भक्त्या तदात्मनो भूत्वा तेषाम् इति न.सं.पु.पाठः।
१६. तावत्कृतानि पापानि इति न.सं.पु.पाठः।

प्राप्नुवन्ति जयं युद्धे रिपुं विद्रुत्य सत्वरम्[१७]। असाध्यान् साधयन्त्याशु लोकमान्याः[१८] पदे पदे ॥४१॥
सौभाग्यमाप्नुयुर्नार्यः[१९] श्रुत्वा चैतत् कथां मुदा। पतिप्रेष्ठा भविष्यन्ति पुत्रवत्यः पतिव्रताः ॥४२॥
देहान्ते ता उमालोके गच्छन्ति पतिभिः समम्। आसते स्वामिना[२०] सार्द्धं महासुखं निरन्तरम् ॥४३॥
हारिणेश्वरमाहात्यं ये शृण्वन्ति नरोत्तमाः। जाम्बूनदमयैयनिर्गच्छन्त्यन्ते परां गतिम् ॥४४॥

एतन्माहात्म्यं कथितं मया ते शृङ्गेश्वराणां महतां त्रयाणाम्।
त्रैलोक्यसन्धारणकारणानां सर्वाऽशुभानाञ्च निवारकाणाम्[२१] ॥४५॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे दक्षिणगोकर्णेश्वरशृङ्गेश्वराणां माहात्म्यं नाम
षडशीतितमोऽध्यायः ॥८६॥

---

युद्धमा तुरुन्त शत्रुलाई लखेटेर विजय प्राप्त गर्दछ, असाध्य वस्तुलाई पनि सिद्ध गर्छ र पाइला–पाइलामा दुनियाँबाट सम्मान पाउँछ। यो कथा सुनेर स्त्रीजातिहरूले सौभाग्य पाउँछन्, उनीहरू पतिका अतिशय प्यारा, पुत्रवती र पतिव्रता हुन्छन्। मरेपछि उनीहरू आफ्ना पतिहरूलाई साथमा लिएर उमालोक जान्छन्। आफ्ना पतिका साथ त्यहाँ उनीहरूले ठूलो सुख पाएर सधैँ बस्छन्। जसले हरिणेश्वर भगवान् शङ्करको माहत्म्य सुन्छन्, ती मानिसहरू अन्त्यमा सुवर्णमय यानमा चढेर परमगतिमा पुग्छन् ॥४१–४४॥

मैले तपाईंलाई ठूला–ठूला तीनवटा शृङ्गेश्वरको महिमा बताएँ। तीनै लोकलाई तार्ने कारण बनेको ईश्वरहरूको यो माहात्म्यले सबै अशुभहरूलाई नाश गर्छ ॥४५॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा दक्षिणगोकर्णेश्वरको माहात्म्यनामक छयासिऔँ अध्याय पूरा भयो।

---

१९. सङ्ग्रामे जयमाप्नोति रिपुं विद्रुत्य सांप्रतम् इति न.सं.पु.पाठः।
२०. लोकमान्यम् इति न.सं.पु.पाठः।
२१. स्त्रियः सौभाग्यमाप्यन्ति इति न.सं.पु.पाठः।
२२. पतिना इति न.सं.पु.पाठः।
२३. सर्वाशुभानि प्रमहेश्वराणाम् इति न.सं.पु.पाठः।

# सप्ताशीतितमोऽध्यायः

वाग्वत्याविर्भावो तन्महिमा च

अगस्त्य उवाच

माहात्म्यं चैव वाग्वत्याः श्रुत्वा तव मुखोद्भवम्। चित्रं मे जायते स्वान्ते दृढं किल्विषनाशनम् ॥१॥
वाग्वतीति सुविख्याता दुःखसंसृतितारिणी। कस्मिन्नवसरे जाता महापुण्यतमा[1] परा ॥२॥
एतच्छ्रोतुञ्च वाञ्छामि वद मे सुरसत्तम।

स्कन्द उवाच

साधु मुने महाप्राज्ञ सारं पृच्छसि मामिह ॥३॥
लोकानां पापमोक्षार्थं पुराणं परमं श्रुतम्। श्रूयतामभिधास्यामि यमशासननाशकम् ॥४॥
शङ्करेण पुरा प्रोक्तं कुलाद्रौ मे पुराणकम्। सृष्ट्वा पूर्वञ्च[2] सप्तर्षीन् सनकादींश्च योगिनः ॥५॥
ब्रह्माण्डं कपिलं सौदं कश्यपं नारदं सुतान्। संसृज्य मनसैवैतान् धाताऽवसीददति स्म च ॥६॥
ववृधिरे प्रजा नाजः प्रेक्ष्य शश्वत्कथञ्चन। दिव्यवर्षशतान्ते च ह्येकश्चैकः पितामहः ॥७॥
असृजन्मनसा कष्टात्ततोऽवसादनाश्रितः। तप्तुमना ययौ धाता शिवकूटं हिमालयम् ॥८॥
विना कृपां महेशस्य कथं सृजामि तानिति।
सस्मार धाता गिरिशेखरे तत् स्नानक्रियार्थं प्रथमं हि गङ्गाम्।
प्रादुरभूत् सा च ततोऽद्रिकूटात् स्वच्छा सुकल्लोलकला उवाह ॥९॥
साऽभूद् ब्रह्मवती गङ्गा सुभद्रा नाम नामतः। रराज रुचिरं दिव्या वसोर्धारा इवोत्सवे ॥१०॥
तां प्रेक्ष्य मुमुदे धाता[3] चाकरोद्धि जलाप्लवम्। भस्मोद्धूलनदेहोऽसौ रुद्राक्षान् प्रदधार वै ॥११॥

---

## अध्याय - ८७

वाग्वतीको आविर्भाव र तिनको महिमा

अगस्त्य मुनिले भन्नुभयो – हजुरको मुखबाट पापलाई पूरै पखाल्ने वाग्वतीको माहात्म्य सुनेर मेरो हृदयमा आश्चर्य पैदा भएको छ। दुःखको संसारबाट तार्ने अत्यन्त पवित्र वाग्वती नाम गरेकी नदी कहिले पैदा भइन् ? यो सबै म सुन्न चाहन्छु, हे कार्तिक स्वामी ! मलाई बताउनुहोस् ॥१–२½॥

कार्तिक स्वामीले भन्नुभयो – हे महाप्राज्ञ मुनि ! तपाईंले ज्यादै सारपूर्ण कुरा मसित सोध्नुभयो। संसारलाई पापबाट मुक्त गर्ने पुरानो अत्यन्त प्रसिद्ध वृत्तान्त छ। यमराजको दण्डबाट मुक्त हुने त्यो कथा म बताउँछु, सुन्नुहोस्। यो पुरानो कथा मलाई कुलाचलमा बसेर भगवान् शङ्करले बताउनुभएको थियो ॥३–४॥

पहिले सप्तर्षिहरू र योगी सनकादि ऋषिहरूको सृष्टि गरेर ब्रह्माजीले ब्रह्माण्ड, कपिल, सौद, कश्यप तथा नारदलाई मनैले सृष्टि गर्नुभयो तैपनि ब्रह्मालाई सन्तोष भएन, उहाँ दुःखित हुनुभयो, दिव्य सय वर्ष भोग गरेर एक-एक ब्रह्मा बित्नुभयो तर त्यो सृष्टिबाट प्राणीहरूको सङ्ख्यामा वृद्धि भएन। त्यसपछि भगवान् महेश्वरको कृपा विना सृष्टि कसरी गर्न सकिन्छ र ? अर्थात् सकिन्न भनेर ब्रह्माजी तपस्या गर्ने इच्छाले हिमालयको शिवकूटमा जानुभयो ॥५–८॥

ब्रह्माजीले त्यस पर्वतको शिखरमा स्नानका निमित्त गङ्गाजीको सृष्टि गर्नुभयो। त्यसपछि त्यसै पहाडको शिखरबाट तरङ्गित भएर स्वच्छ गङ्गा बगिन्। शोभाले युक्त भएकी, उत्सवकी वसुधाराजस्ती, अत्यन्त सुन्दर र कहिल्यै नसुक्ने सुभद्रा नाम भएकी तत गङ्गा ब्रह्मवती नामले प्रसिद्ध भइन्। ती नदीलाई देखेर ब्रह्माले प्रसन्न हुँदै स्नान गर्नुभयो। त्यसपछि उहाँले शरीरमा खरानी घस्नुभयो र रुद्राक्ष लगाउनुभयो ॥९–११॥

---

१. महत्पुण्यतमा इति न.सं.पु.पाठः। २. पूर्वस्मिन् सृज्य इति न.सं.पु.पाठः।
३. धाता मुमोद तां प्रेक्ष्य इति न.सं.पु.पाठः।

रुद्रसूक्तिभिरीशानमृचाभिश्चतुराननः। ईशानाद्यैश्च तद्भक्त उपतस्थेऽद्रिशेखरे ॥१२॥
गायत्री चैव सावित्री जलाकारे बभूवतुः[४]। ब्रह्मणस्तत्र सन्ध्यायां शक्ती सुनिर्मले परे ॥१३॥
परमात्मानमात्मानं निर्गुणं तेजसां परम्। स्वकीयांशमहोरात्रं धाताराधितवान् हरम् ॥१४॥
भक्तिभिस्तोषितो धातुः शक्त्या युक्तो महेश्वरः। गगनाद् वृषकेतुर्वै तं वरेण्य[५] समाययौ ॥१५॥
ब्रह्मध्वनिं समाकर्ण्य चतुरास्येरितं हरः। मुमुदेऽतिशयं देवः तां[६] तां प्रेक्ष्य नदीं पराम् ॥१६॥
हर्षात् साट्टाट्टहासं स धात्रे प्रोवाच शेखरे। साधु साधु विधे ब्रह्मन् ब्रूहि वरय मद्वरम् ॥१७॥
इत्युक्तवति धातारं[७] सहसा चन्द्रशेखरे। स्वच्छः[८] शङ्करजिह्वातो ब्रह्मविन्दुः पपात वै ॥१८॥
रुद्राननोद्भवो विन्दुर्निर्मलो[९] गिरिशेखरात्। उवाह स्यन्दिनी शीघ्रं तरङ्गमालिनी शुभा ॥१९॥
समाप्लवानां कलुषप्रहारिणीं ददर्श धाता सुखमाप्रवाहिनीम्।
ददर्श गङ्गामभिवाहिनीं पुरा महेशमूर्ध्नि प्रविलासशालिनीम् ॥२०॥
गिरीशजिह्वाग्रविनिःसृतां परां[१०] सुशीतलाम्भःसुतरङ्गमालिनीम्।
ततश्च जिह्वाग्रविसारिणीं विभोर्विलोक्य धाताऽऽशु तुतोष तां नदीम् ॥२१॥
प्रणिपत्य महेशानं प्रेक्ष्याम्बरागतं हरम्। अभिधानञ्चकाराऽजः सम्मुदे भवजन्मिनाम्[११] ॥२२॥

---

ब्रह्माजीले शिवभक्त बनेर रुद्रका सूक्तिहरू र ईशान आदि ऋचाहरू जप्दै त्यस पर्वतको शिखरमा भगवान् शङ्करको उपासना गर्नुभयो। ब्रह्माजी सन्ध्या गर्न लाग्नुभएको बेलामा स्वच्छ जलको रूप लिएर गायत्री र सावित्री प्रादुर्भाव भए। त्यसपछि आत्मस्वरूप, निर्गुण र तेजोयुक्त भएका आफ्नै अंशका रूपमा रहेका भगवान् शङ्करलाई ब्रह्माजीले आराधना गर्नुभयो। ब्रह्माजीको भक्तिले सन्तुष्ट भएका शक्तियुक्त महादेव साँढेमा चढेर आकाशबाट ओर्लनुभयो ॥१२–१५॥

ब्रह्माजीको मुखबाट निस्किएको वेदध्वनिको श्रवण र ती उत्कृष्ट नदीको दर्शनले भगवान् शङ्कर अत्यन्त प्रसन्न हुनुभयो। उहाँले बडो अट्टहास गर्दै हर्षपूर्वक शिखरमा बसेका ब्रह्माजीलाई भन्नुभयो – हे सृष्टिकर्ता ब्रह्मा ! तिमीलाई साधुवाद छ। तिमी जे वर चाहन्छौ, त्यो माग ॥१६–१७॥

यसरी त्यहाँ भगवान् शङ्करले बोल्दाबोल्दै उहाँको जिब्राबाट अचानक निर्मल ब्रह्मविन्दु खस्यो। रुद्रको मुखबाट खसेर पहाडको शिखरबाट झरेको स्वच्छ विन्दु तरङ्गित भएर गङ्गाको रुमा तुरुन्त बग्यो। स्नान गर्ने व्यक्तिहरूको पापलाई पखाल्ने आनन्दसँग बगेकी गङ्गालाई ब्रह्माले देख्नुभयो। साक्षात् महेश्वरको शिरमा घुम्ने गङ्गाको ब्रह्माजीले दर्शन पाउनुभयो। महेश्वरको जिब्राको अग्रभागरूपी गुफाबाट निस्किएर बग्ने चीसो जलको तरङ्गमालाले युक्त भएकी हिमालयको काखमा बगेकी ती नदीलाई देखेर ब्रह्माजी अति प्रसन्न हुनुभयो। आकाशमा रहनुभएका प्राणीहरूका कल्याणकारी शङ्कर महादेवलाई देखेर ब्रह्माजीले स्तुति गर्नुभयो ॥१८–२२॥

---

४. जलरूपे च निर्मले इति न.सं.पु.पाठः।
५. तद्वरेण्यम् इति न.सं.पु.पाठः।
६. मुमोदतिशयं देवस्ताम् इति न.सं.पु.पाठः।
७. इत्युक्ते सहसा तत्र इति न.सं.पु.पाठः।
८. स्वच्छम् इति न.सं.पु.पाठः।
९. बिन्दुर्निर्मलम् इति न.सं.पु.पाठः।
१०. गिरीशजिह्वाग्रगुहाविनिसृतां गामिनीम्, इति न.सं.पु.पाठः।
११. सुखजन्मिनाम् इति न.सं.पु.पाठः।

ब्रह्मोवाच

देवि लयान्तमद्यादि[१२] तेऽभिधानं भविष्यति। वाग्वतीति समाख्यानं तव लोके भविष्यति ॥२३॥
त्रिंशद्वर्षसहस्राणि नृणां कलौ हि वाग्वती। गते पञ्चसहस्राब्दे सुरसरिद् भविष्यसि ॥२४॥
देवासुरमनुष्यैस्त्वं यक्षगन्धर्वकिन्नरैः। सेविता फलदा तेभ्यश्चतुर्वर्गञ्च दास्यसि ॥२५॥
वागीशे वाग्भवे वाणि भारति भयहारिणि। वाग्विभूति भवेशानि भवप्रिये नमोऽस्तु ते ॥२६॥
ब्रह्मशब्देऽनिशं ब्राह्मि वाचिके शब्दरूपिणि। वाक्यैश्च[१३] भाषिते नानाभाषारूपे नमोऽस्तु ते ॥२७॥
यां विना प्राणिनः[१४] सर्वे शवा एवाचलाङ्गिनः। वाग्विभूत्यम्बिके सा त्वं शब्दरूपे नमोऽस्तु ते ॥२८॥

विष्णुरुवाच

मूलशक्तेः समुद्भूता शम्भोर्जिह्वाग्रनिःसृता। जलरूपेण ते नाम ब्रह्मसरस्वती च तत्[१५] ॥२९॥
त्रेताद्वापरयोर्मध्ये त्रिंशद्वर्षसहस्रकम्। ब्रह्मसरस्वती गङ्गा वाग्देवी त्वं भविष्यति ॥३०॥
लोका यं यं प्रकाङ्क्षन्ति स्नातकास्त्वयि भारति। तं तं दत्त्वेप्सितं तान्तान्संसारादुद्धरिष्यसि ॥३१॥
ब्राह्मी माहेश्वरी दुर्गा वाराही कमला शिवा। चामुण्डा वैष्णवी काली कौमारी वासवी परा ॥३२॥
गौरी पद्मेश्वरी मेधा सावित्री विजया जया। हृष्टिः पुष्टिः स्वधा तुष्टिः स्वाहार्या ह्रीश्च मङ्गला ॥३३॥
अणिमाद्यष्टधा चेमा मातरस्ते विभूतयः। भारति जलरूपेणावतरसि नमोऽस्तु ते ॥३४॥

---

ब्रह्माजीले भन्नुभयो – हे देवी ! शिवजीको मुखबाट पैदा भएर पर्वतबाट तल झरेकी तिमी लोकमा वाग्वतीको नामले प्रसिद्ध हुनेछ्यौ। कलियुगमा तीस हजार वर्षसम्म वाग्वतीको नामले प्रसिद्ध हुनेछ्यौ। अनि पाँच हजार वर्ष बितेपछि तिम्रो नाउँ सुरसरित् अर्थात् गङ्गा हुनेछ। देवता, असुर, मानिस, यक्ष, गन्धर्व र किन्नरले तिम्रो सेवा गर्नेछन्। तिनीहरूलाई तिमी धर्म, अर्थ, काम र मोक्ष चारै किसिमका फल दिनेछ्यौ ॥२३–२५॥

हे वागीशी ! हे वाग्द्वारबाट पैदा भएकी वाणीरूपा भारती ! हे भयहारिणी ! हे वाग्विभूति ! हे भवेशानी ! हे भवप्रिया ! हजुरलाई नमस्कार छ। हे ब्रह्मशब्दरूपा ! हे ब्राह्मी ! हे शब्दको रूप लिने भगवती ! हे भाषा ! हे नानारूप लिने देवी ! हजुरलाई नमस्कार छ। जुन विना सबै प्राणीहरू अचल अङ्ग भएका मूर्दा हुन्छन्, बोलीकी विभूति भएकी हे अम्बिके ! हे शब्दरूपा ! हजुरलाई नमस्कार छ ॥२६–२८॥

विष्णुले भन्नुभयो – मूलशक्तिबाट उत्पन्न भएकी शिवजीको जिब्राको टुप्पाबाट निक्लिएकी हे देवी ! जलको रूप लिंदा तपाईंको नाम ब्रह्मसरस्वती भएको छ ॥२९॥ हे वाग्देवी ! त्रेता र द्वापर युगको बीचमा तीस हजार वर्षसम्म तपाईं ब्रह्मसरस्वती गङ्गा भएर रहनुहुनेछ ॥३०॥ हे वाग्वती ! मानिसहरूले जुन जुन कामना लिएर तपाईंको जलमा स्नान गर्नेछन्, ती ती व्यक्तिलाई उनीहरूले चाहेको फल प्रदान गरेर संसारबाट उद्धार गर्नुहुनेछ ॥३१॥ हे वाग्वती ! ब्राह्मी, माहेश्वरी, दुर्गा, वाराही, कमला, शिवा, चामुण्डा, वैष्णवी, काली, कौमारी, वासवी, गौरी, पद्मेश्वरी, मेधा, सावित्री, विजया, जया, हृष्टि, पुष्टि, स्वधा, तुष्टि, स्वाहा, आर्या, ह्री, मङ्गला तथा अणिमा आदि गरिएका अष्टसिद्धिहरू तपाईंका नै विभूति हुन्। हे भारती ! जलका रूपमा अवतार लिनुभएकी हजुरलाई नमस्कार छ ॥३२–३४॥

---

१२. प्रत्यान्तमद्यादि इति न.सं.पु.पाठः।
१३. वाक्य च इति न.सं.पु.पाठः।
१४. जीविन इति न.सं.पु.पाठः।
१५. सा इति न.सं.पु.पाठः।

ईश्वर उवाच

मम जिह्वासमुद्भूता यतस्त्वं देवि वाग्वति। वाग्भूषिणी महापुण्या भव सरिद्वराऽनिशम् ॥३५॥
भविता शिवगङ्गा त्वं मत्तः समुद्भवा यतः। सर्वलोका वदिष्यन्ति ते नाम भारती शिवे ॥३६॥
त्रेतादौ सत्यशेषे त्वं दिव्यवर्षशतं सति। शिवगङ्गेति सम्मान्या सर्वलोकैः प्रपूजिता ॥३७॥
भुक्तिमुक्तीप्सितं कामञ्चतुर्वर्गाजरामृतम्। स्नातकेभ्यश्च ते तोये दास्यसि सति वाग्वति ॥३८॥
पूजयिष्यन्ति लोकास्त्वां बहुमानपुरःसरम्[१६]। लोकानां फलदाऽजस्रं भविष्यसि ततोऽनिशम् ॥३९॥
स्नान्ति ये सर्वदा भक्त्या[१७] श्रद्धया च निरन्तरम्। विधूतकिल्विषास्ते वै गमिष्यन्ति ममालयम् ॥४०॥
जपार्चनं प्रकुर्वन्ति त्वत्तटे स्नातकाः शुचौ। योगिनस्ते भविष्यन्ति मम[१८] भक्त्या मदात्मनः ॥४१॥
यत्र यत्र किल स्नाता नदीनां सङ्गमे तव[१९]। लप्स्यते तैः[२०] फलं पुण्यमन्यच्छतगुणं सदा ॥४२॥
सर्वपर्वसु यत्नेन स्नात्वा त्वयि वरानने। त्वत्तोयैर्मत्प्रियैर्यो मामभिषिञ्चति[२१] भक्तितः ॥४३॥
उद्धरिष्याम्यहं तं वै दुःखसंसारसंसृतेः। भूतिकामाय[२२] भूतिञ्च मद्भक्ताय[२३] ददाम्यहम् ॥४४॥
यास्त्वशक्ता भर्तृनाशे भवितुं सहगामिनी[२४]। सकृत् स्नात्वा परं लोके स्थास्यन्ति स्वामिना[२५] सह ॥४५॥

---

ईश्वरले भन्नुभयो – हे देवी ! वाग्वती ! तिमी मेरो जिब्राबाट पैदा भएकी हौ। त्यसैले हे वाग्भूषिणी ! तिमी सधैँ ज्यादा पुण्यवती नदी बन किनभने तिमी मबाट उत्पन्न भएकी शिवगङ्गा हौ। त्यसैले सबै मानिसहरूले तिमीलाई भारती भनेर भन्नेछन्। हे सती ! त्रेता युगको आदि र सत्य युगको अन्त्यमा दिव्य सय वर्षसम्म शिवगङ्गाको नामले तिमीलाई सबै मानिसहरूले सम्मान गर्नेछन्, पूजा गर्नेछन् ॥३५-३७॥

हे वाग्वती ! तिम्रो पानीमा स्नान गर्ने व्यक्तिलाई भुक्ति, मुक्ति, इच्छा लागेको वस्तु, धर्म, अर्थ, काम, मोक्ष, अजरता तथा अमरताको वर दिन तिमी सक्छ्यौ। मानिसहरूले तिमीलाई अत्यन्त सम्मानका साथ पूजा गर्नेछन्। त्यसैले तिमी तिनीहरूलाई निरन्तर फल दिनेछ्यौ। जसले सधैँ भक्तिपूर्वक तिम्रो जलमा स्नान गर्छन्, ती व्यक्तिहरू पापबाट मुक्त भएर मेरो लोकमा जानेछन्। जसले तिम्रो जलमा स्नान गरेर तिम्रो तटमा जप तथा पूजा गर्छन्, मेरो भक्ति गर्छन्, ती योगीहरू मेरै रूपमा परिणत हुन्छन्। जुनसुकै नदीका साथ भएको तिम्रो सङ्गममा जसले स्नान गर्छन्, ती व्यक्तिलेहरूले अन्यत्र स्नान गरेको पुण्यभन्दा सयगुणा बढी पुण्यफल पाउँछन् ॥३८-४२॥

जसले विशेष श्रद्धा राखेर तिम्रो जलमा सबै पर्वमा स्नान गर्छ, तिम्रो जल ल्याएर मलाई भक्तिपूर्वक स्नान गराउँछ, त्यसलाई म दुःखरूपी संसारको सागरबाट उद्धार गर्छु। तिम्रो नदीको जलमा स्नान गरेर जसले मेरो पूजा गर्छन्, तिनलाई म मुक्ति दिन्छु। जो अशक्त स्त्रीजातिहरू छन्, तिनले आफ्ना पतिहरू मरेपछि तिम्रो जलमा एकपटक मात्र भए पनि स्नान गरेर प्राणत्याग गर्छन् भने उनीहरूले पतिका साथ परलोकमा बस्न पाउँछन् ॥४३-४५॥

---

१६. बहुमान्यपुरःसरै इति न.सं.पु.पाठः।
१७. स्नायन्ति त्वयि ये भक्त्या इति न.सं.पु.पाठः।
१८. मयि इति न.सं.पु.पाठः।
१९. त्वयि इति न.सं.पु.पाठः।
२०. लभिष्यन्ति इति न.सं.पु.पाठः।
२१. मामभिषेचति इति न.सं.पु.पाठः।
२२. भूतकामेन इति न.सं.पु.पाठः।
२३. मद्भक्तिभ्य इति न.सं.पु.पाठः।
२४. या त्वशक्ताऽबला भर्तुः प्राणान्ते सहगामिनी इति न.सं.पु.पाठः।
२५. पतिना इति न.सं.पु.पाठः।

ततो व्याचष्ट भूतेशः प्रेक्ष्य हरिं पितामहम्। सन्तुष्टात्मा ऋचाभिस्तत्सर्वभूतगुहाशयः ॥४६॥
तपसाऽनेन सन्तुष्टस्त्वया तप्तं यतश्चिरम्। तस्माद्वै मत्प्रसादात्त्वं प्राणिनो[२६] मिथुनैः सृज ॥४७॥
तपसाऽनेन सन्तुष्टस्त्वया तप्तं यतश्चिरम्। तस्माद्वै मत्प्रसादात्त्वं प्राणिनो[२७] मिथुनैः सृज ॥४७॥
ततः प्रजाः प्रवर्द्धन्ते चतुरशीतिलक्षकम्। जातीनां वर्द्धनं[२८] शश्वन्नान्यप्रकारतो विधे ॥४८॥
विष्णो प्रपालय त्वं तान् स्वकर्मभोगिनोऽनिशम्[२९]। प्रपश्य मे[३०] हरे गङ्गां मच्छक्तिं लोकतारिणीम् ॥४९॥
वाग्वतीं तां मुमुक्षूणां प्राणिनाञ्च परां गतिम्[३१]। नो गतिर्वाग्वतीं हित्वा[३२] नराणां वाग्वती गतिः ॥५०॥
नास्ति येषां गतिः क्वापि तेषां हि सा गतिर्ध्रुवम्। मम शक्तिः परा देवी वाग्वतीत्यभिधीयते ॥५१॥

स्कन्द उवाच

दत्त्वेप्सितं वरं तेभ्यः प्रययौ शङ्करः परम्। यत्रैव तेजसां लिङ्गं तत्र स्थानं स्वकं सुराः ॥५२॥
प्रतप्य तत्र विष्णुर्वै तन्मन्त्रं प्रजपन् ध्रुवम्। सवरो द्वादशाब्दान्ते स्वलोकं प्रययौ मुने ॥५३॥
ससर्ज्ज मिथुनेनैव सर्वलोकं पितामहः। ररक्ष हि प्रजा विष्णुः स्वकर्मवशगाः सदा ॥५४॥
ततो वर्षसहस्रान्ते ज्ञात्वा विधिमुखात्सुराः। सप्तर्षिभिः समं सिद्धैः प्रययुश्चैव वाग्वतीम् ॥५५॥
पुष्पवृष्टिं प्रकुर्वन्तो[३३] ययुरप्सरसां गणाः। वाग्वतीप्रभवो यत्र स्नातुं तत्र मुदान्विताः ॥५६॥
ययुस्तीर्थानि वाग्वत्यां तिस्रः कोट्योऽर्धकोटयः। सङ्गमाय तया सार्द्धं तस्यां स्नातुं विलोकितुम्[३४] ॥५७॥
तदादि तां न मुञ्चन्ति तानि स्वैः स्वैर्मुदांशकैः। वाग्वतीतटगे दिव्ये देशे नैपालके शुभे ॥५८॥

---

त्यसपछि सबै प्राणीहरूको हृदयमा बस्ने भगवान् शङ्करले विष्णु र ब्रह्मालाई हेरेर उनीहरूको स्तुतिबाट सन्तुष्ट हुँदै भन्नुभयो- धेरै समयसम्म तिमीले तपस्या गऱ्यौ, यो तपस्याबाट म सन्तुष्ट भएँ। त्यसैले मेरो अनुग्रह अनुसार तिमी मैथुनी सृष्टिद्वारा प्राणीहरूको सृजना गर। त्यसपछि चारलाख प्रजाहरू बढ्नेछन् र सबै जातिहरू फैलिनेछन्। हे ब्रह्माजी ! अरू प्रकारबाट यो सम्भव छैन ॥४६-४८॥

हे विष्णु ! तपाईं आफ्नो कर्मको भोग गर्ने ती प्रजाहरूलाई निरन्तर पालना गर्नुहोस्। हे हरि ! लोकलाई तार्ने मेरी शक्ति गङ्गाको दर्शन गर्नुहोस्। मोक्ष चाहना गर्ने प्राणीहरूका लागि वाग्वती परादेवी हुन्। वाग्वतीविना पृथ्वीमा मानिसको गति छैन। जसको कहीं पनि गति छैन त्यसका लागि अवश्य वाग्वती नै गति हो, वाग्वती नै मेरी पराशक्ति हुन् भनेर भनिएको छ ॥४९-५१॥

कार्तिक स्वामीले भन्नुभयो – तिनीहरूलाई वर दिएर भगवान् शङ्कर परमपदमा जानुभयो। जहाँ तेजोमय लिङ्ग थियो, त्यसै ठाउँमा देवताहरूले आफ्नो वासस्थान बनाए। हे अगस्त्य मुनि ! त्यसै ठाउँमा विष्णु भगवान् शङ्करको मन्त्र जप्दै बाह्र वर्षपछि वर प्राप्त गरेर आफ्नो लोकमा जानुभयो। ब्रह्माजीले मैथुनी सृष्टिद्वारा सम्पूर्ण प्राणीहरूको सृष्टि गर्नुभयो। विष्णुले आ–आफ्नो कर्म अनुसार हिँड्ने प्राणीहरूलाई सधैं पालना गर्नुभयो। त्यसको हजार वर्ष बितेपछि ब्रह्माजीको मुखबाट सबै कुरा थाहा पाएर देवताहरू सिद्धऋषि र सिद्धहरूका साथ वाग्वतीमा गए। जहाँ वाग्वती उत्पन्न भएकी थिइन्, त्यहाँ अत्यन्त खुसी भएर पुष्पवृष्टि गर्दै स्नान गर्न अप्सराहरू गए। तीन करोड पचास लाख तीर्थहरू वाग्वतीसँग मिल्न, स्नान गर्न र उनको दर्शन गर्न त्यहाँ गए। त्यसै समयदेखि वाग्वतीको तीररमा गएका ती तीर्थहरूले दिव्य कल्याणमय नेपालको क्षेत्रलाई आ–आफ्नो अंशले छोडेका छैनन् ॥५२-५८॥

---

२६. जीविन इति न.सं.पु.पाठः।
२७. जीविन इति न.सं.पु.पाठः।
२८. सकलम् इति न.सं.पु.पाठः।
२९. स्वकर्मभुञ्जिनोऽनिशम् इति न.सं.पु.पाठः।
३०. पश्यमे इति न.सं.पु.पाठः।
३१. गतिं पराञ्च जीविनाम् इति न.सं.पु.पाठः।
३२. देवी इति न.सं.पु.पाठः।
३३. वर्षयन्पुष्पवर्षञ्च इति न.सं.पु.पाठः।
३४. दर्शितुम् इति न.सं.पु.पाठः।

देवर्षयो न मुञ्चन्ति क्षेत्रं पाशुपतं सदा[३५] । वाग्वत्याञ्च मुदा स्नात्वा तिष्ठन्ति तत्र भक्तितः ॥५९॥
सर्वदा राजते देवी वाग्वती विश्वपावनी । हेमपद्मतटोद्भूतैर्हेमवल्लीद्रुमैर्भृशम् ॥६०॥
विमलाम्बुनदी श्रेष्ठा चोमाद्रिकन्दरात्स्रुता । देव्याः शृङ्गाररसम्भूता सा तया राजते समम् ॥६१॥
वाग्वती राजतेऽत्यन्तं मुञ्जवद्गिरिसानुनि[३६] । महाश्मशकलाकीर्णा प्रपातेन रसातले ॥६२॥
चन्द्रभागा नदी श्रेष्ठा तयोः समागमेन सा । प्रवाहेन बभौ तीव्रं स्वच्छकल्लोलमालिनी ॥६३॥
पितृभिः सेव्यमाना सा लोकपापविनाशिनी । फलदा स्नातकानाञ्च वाग्वती सा विराजते ॥६४॥
वाग्वतीप्रभवे पुण्ये सुरासुरनिषेविते । तत्र गत्वा दिवं यान्ति विमुक्ताः सर्वकिल्विषैः ॥६५॥
यश्चारोहति संस्नातुं वाग्वतीप्रभवं गिरिम् । पदे पदे फलं विन्द्याद्वाजपेयाश्वमेधयोः ॥६६॥
तस्यां स्नात्वा नरो भक्त्या हाटकेन रथेन सः । सर्वैनसा विनिर्मुक्तः शिवलोकं च गच्छति ॥६७॥
सर्वपर्वसु यत्नेन तत्र स्नात्वा ददाति यः । स्वर्णादिकानि दानानि[३७] चाऽक्षयं फलमाप्नुयात् ॥६८॥
मेषस्थेऽर्के विशेषेण तदुत्पत्तिदिने शुभे । तत्र स्नातः सुनिष्पापो ग्रहणे चन्द्रसूर्ययोः ॥६९॥
कोटिकोटिगुणं पुण्यं सर्वतीर्थनिषेवणात्[३८] । स्नात्वा तत्रैव यत्किञ्चिद्ददाति भक्तिमान्[३९] बुधः ॥७०॥
भक्त्या स्नानादुमाशैले सर्वपापैर्विवर्जितः । हिरण्मयरथस्थः स रुद्रलोके सुखी वसेत् ॥७१॥

---

देवर्षिहरू पशुपतिको क्षेत्रलाई कहिल्यै पनि छोड्दैनन् । तिनीहरू वाग्वतीमा भक्तिपूर्वक आनन्दसित स्नान गरेर बस्दछन् । त्यसै समयदेखि संसारलाई पवित्र तुल्याउने वाग्वती नदी सुवर्णमय कमलको तटबाट उत्पन्न भएका सुवर्णमय वल्लीले युक्त रुखहरूद्वारा सुशोभित भएकी छन् । स्वच्छ पानी भएकी, गौरीपर्वतको गुफाबाट निस्किएकी र पार्वतीकी शृङ्गारस्वरूप ती उत्तम वाग्वती नदी गुह्येश्वरीका साथ सुशोभित भएकी छन् ॥५९-६१॥

मुञ्जवान् नाम गरेको पहाडको शिखरबाट पृथ्वीतलमा झरेकी ठूला ढुङ्गाहरूले व्याप्त वाग्वती नदी अत्यन्त सुशोभित छिन् । स्वच्छ तरङ्गले युक्त भएकी, चन्द्रभागा नाम गरेकी उत्तम नदी छन् । चन्द्रभागाको समागमले गर्दा प्रवाहमय बनेकी वाग्वती सुशोभित भएकी छन् । त्यहाँ आएर पितृहरू पनि बसेका हुन्छन् । उनले सम्पूर्ण प्राणीहरूको पापलाई नाश गरिदिन्छन्, स्नान गर्ने व्यक्तिहरूलाई इच्छा लागेको फल दिन्छन् । त्यस्ती वाग्वती त्यहाँ विराजमान भएकी छन् । देवता र राक्षसहरू बसेको पवित्र वाग्वतीका उद्गमस्थलमा पुग्ने मानिसहरू सम्पूर्ण पापबाट मुक्त भएर स्वर्ग जान्छन् ॥६२-६४॥

जुन मानिस वाग्वती पैदा भएको पहाडमा स्नानका लागि आरोहण गर्छ, त्यस व्यक्तिले पाइलैपिच्छे वाजपेय र अश्वमेध यज्ञ गरेको फल पाउँछ भनेर जान । जुन मानिस भक्तिपूर्वक वाग्वतीमा गएर स्नान गर्छ, त्यो व्यक्ति सम्पूर्ण पापबाट मुक्त भएर सुवर्णमय रथमा बसेर शिवलोक जान्छ । त्यहाँ सबै पर्वमा श्रद्धाका साथ जसले सुवर्ण आदि दान गर्छ, त्यसले अक्षय फल प्राप्त गर्दछ । मेष राशिमा सूर्य भएको बेला विशेष गरेर वाग्वतीको उत्पत्तिको पवित्र दिनमा तथा चन्द्र र सूर्यको ग्रहणमा जसले त्यहाँ स्नान गर्छ त्यो व्यक्ति पापबाट मुक्त हुन्छ । भक्त तथा विद्वान् व्यक्तिले सम्पूर्ण तीर्थबाट जुन पुण्य पाउँछ, त्योभन्दा करोडौं गुणा बढी पुण्य त्यस ठाउँमा स्नान गरेर दान गर्नाले उसले प्राप्त गर्छ । गौरीपर्वतमा गएर श्रद्धापूर्वक स्नान गर्नाले मानिस सम्पूर्ण पापबाट मुक्त भएर सुवर्णमय रथमा चढेर रुद्रलोकमा सुखसित बस्छ ॥६५-७१॥

---

३५. क्षेत्रे पाशुपतेऽनिशम् इति न.सं.पु.पाठः ।
३६. सानोर्मुञ्जवतो गिरे इति न.सं.पु.पाठः ।
३७. दायानि इति न.सं.पु.पाठः ।
३८. सर्वतीर्थोद्भवाल्लभेत् इति न.सं.पु.पाठः ।
३९. भक्तित इति न.सं.पु.पाठः ।

उमातीर्थं समासाद्य स्नाति यः खलु[४०] भक्तितः। स्त्रियाः[४१] सौभाग्यमाप्नोति स्त्री च पुंसो न संशयः ॥७२॥
श्राद्धं करोति तत्रार्यो ह्यमायान्तु विशेषतः। पितृन् सम्यक् समुद्धृत्य पितृलोके महीयते ॥७३॥
जपार्चनमुमातीर्थे यः करोति सदा नरः। इह लोकं परित्यज्य रुद्रलोकं स गच्छति ॥७४॥
यस्मिन् काले च सम्भूता वाग्वती तत्र पार्वती। अहोरात्रं मुदा तेपे चोमातीर्थमभूत् परम्[४२] ॥७५॥
स्नानशृङ्गारसम्भूता चोमाया ह्यपरा नदी। सुन्दरीति समाख्यातोवाह सौन्दर्यसंयुता[४३] ॥७६॥
सुन्दरीसङ्गमे तीर्थे वाग्वत्याः पापहारिणि। स्नातो जापी मतो धीरो योगी स तपसां वरः ॥७७॥
ब्रह्मगङ्गाभिधानायां सुभद्रायां निमज्जकः[४४]। इह लोकं समुत्सृज्य ब्रह्मलोकं परं व्रजेत् ॥७८॥
ब्रह्मगङ्गासमं तीर्थं नास्ति द्वीपेषु सर्वदा। ब्रह्मद्रवमयी साक्षाद्देवर्षिभिः प्रसेविता ॥७९॥
अनन्ताख्ये महातीर्थे स्नात्वा विकिल्विषो भवेत्। नागभयं समुत्सृज्य परलोके सुखी भवेत् ॥८०॥
अनन्तेन पुरा तप्तं यत्र ह्रदोत्तमे नरः। स्नात्वा तत्रैव निष्पापो निर्भयः[४५] त्रिदिवं व्रजेत् ॥८१॥

लोमहर्षण उवाच

श्रुत्वाऽगस्त्यो महत्त्वं तत् तपःक्षेत्रं सुसिद्धिदम्। तप्तुं तत्रैव सोऽवाञ्छद्[४६] रुद्रभक्तो महामनाः ॥८२॥
द्वादशाब्दं तपस्तेपे चाऽऽराध्य शङ्करं मुदा। तत्क्रियार्थं समुद्भूता स्वच्छाम्बुवाहिनी नदी ॥८३॥

---

जसले भक्तिपूर्वक उमातीर्थमा गएर स्नान गर्छ, त्यसले स्त्रीबाट सौभाग्य पाउँछ, स्त्रीले पनि पुरुषबाट सौभाग्य पाउँछे, यसमा शङ्का छैन। जुन मानिसले पवित्र भएर विशेष गरी अमावास्याको दिन श्राद्ध गर्छ, त्यसले पितृहरूलाई राम्रोसित उद्धार गरेर पितृलोकमा स-सम्मान बस्न पाउँछ। जसले उमातीर्थमा गएर जप, पूजा तथा दान गर्छ, त्यो व्यक्ति यस लोकलाई छोडेपछि रुद्रलोकमा जान्छ। जुन दिन वाग्वती नदी पैदा भएकी थिइन्, त्यसै दिन पार्वतीले एक अहोरात्र त्यहाँ तपस्या गर्नुभएको थियो। त्यसैले यो तीर्थ उत्तम उमातीर्थ भयो ॥७२–७५॥

पार्वतीले स्नान र शृङ्गार गर्दा त्यहाँ सुन्दरी नाम गरेकी अर्की नदी पैदा भइन् र बडो राम्रोसित बगिन्। सुन्दरीजल र पाप नाश गर्ने वाग्वती नदीको सङ्गममा स्नान तथा जप गर्नाले मानिस योगी तथा तपस्वी हुन्छ। जसले ब्रह्मगङ्गा नाम गरेको सुभद्रा नदीमा स्नान गर्छ, त्यो व्यक्ति यो लोकलाई छोडेपछि उत्तम ब्रह्मलोकमा जान्छ ॥७६–७८॥

साक्षात् ब्रह्माजीको पसिनाबाट निस्किएकी ब्रह्मगङ्गाको जुन तीर्थ छ, त्यस्तो ठूलो तीर्थ यस द्वीपमा कतै पनि छैन, त्यहाँ साक्षात् देवर्षिहरूको वास छ। अनन्त नाम गरेको महातीर्थमा स्नान गर्नाले मानिस पापबाट मुक्त हुन्छ। नागको डरबाट मुक्त भएर त्यो व्यक्ति परमलोकमा सुखपूर्वक बस्न पाउँछ। हे मानिस हो ! अनन्त नागले पहिले जहाँ तपस्या गरेका थिए, त्यस तलाउमा स्नान गऱ्यो भने मानिस भय र पापबाट मुक्त भएर स्वर्ग जान्छ ॥७९–८१॥

लोमहर्षणले भन्नुभयो – रुद्रभक्त अगस्त्य मुनिले सिद्धिदायक तपस्याको क्षेत्र भएको त्यस ठाउँको महत्त्व सुनेर त्यहाँ तपस्या गर्न जाने विचार गर्नुभयो। बाह्र वर्षसम्म उहाँले भगवान् शङ्करको आराधना गरेर तपस्या गर्नुभयो। उहाँकै कामका लागि पवित्र जल भएकी नदी पैदा भइन् ॥८२–८३॥

---

४०. स्नायते यस्तु इति न.सं.पु.पाठः।
४१. स्त्रिषु इति न.सं.पु.पाठः।
४३. सुन्दरीति समाख्याता सौन्दर्येण उवाह सा, इति न.सं.पु.पाठः।
४२. चोमातीर्थं भवेत्परम् इति न.सं.पु.पाठः।
४३. स्नायते यः सुभद्रायां ब्रह्मगङ्गाभिधानके इति न.सं.पु.पाठः।
४४. विभीत इति न.सं.पु.पाठः।
४५. वाञ्छ्यार्य इति न.सं.पु.पाठः।

वाग्वत्याः सङ्गमे तस्या सस्नुर्देवर्षयः पुरा। अगस्त्यतीर्थं सम्बुद्धं[४७] तदा देवैर्महाफलम् ॥८४॥
तत्र स्नात्वा दिवं यान्ति सर्वपापैर्विवर्जिताः। अन्त्यजाश्च द्विजा भूत्वा जायन्ते परजन्मनि[४८] ॥८५॥
अगस्त्यतीर्थमासाद्य स्नान्ति ये मुनयः सदा[४९]। तत्र स्नात्वा दिवं यान्ति चाऽगस्त्यभवने सुखम् ॥८६॥
शृणुध्वं मुनयो भूयो विमलाम्बुप्रशंसनम्। वदति स्म यथा पूर्वं स्वभक्ताय षडाननः[५०] ॥८७॥

स्कन्द उवाच

विमलाम्ब्वन्तिके चाऽसीत्सुन्दरो नाम नागराट्। तार्क्ष्येण भूषितः सत्यात्त्यक्त्वाशनं दयावता[५१] ॥८८॥

अगस्त्य उवाच

सन्त्यज्य भक्षणं तार्क्ष्यस्तेनाहिना विभूषितः। दयालुरभवद्भक्ते कथमेतद्वद प्रभो ॥८९॥

स्कन्द उवाच

कद्रुः सुतान् समालोक्य प्रहर्षितवती सदा। सुन्दरविग्रहान् तुष्टान् तनयान् प्रीतमानसा[५२]। ॥९०॥
विनता स्वात्मजौ प्रेक्ष्य दीनानना बभूव सा। पक्षिणावूरुहीनौ च विकटास्यौ प्रदुःखिता[५३] ॥९१॥
कस्मिँश्चिद्दिवसे नागाः संसदि मातरं मुदा। नमश्चक्रुः समं गत्वा[५४] विमातरं प्रलोक्य च ॥९२॥
सभ्रातृगरुडां तत्र तादृशीं मातरं स्वकाम्। उच्चैः प्रजहसुर्नागाः तयोर्हि प्रेक्षमाणयोः[५५] ॥९३॥
विनता दुःखिताकर्ण्य वचः पुत्रोपहासकम्। सापत्नजमुखोद्भूतं प्रेक्ष्य विषमविग्रहौ ॥९४॥
स पृच्छति स्म दीनास्यां पक्षिराट् मातरं मुहुः। आलोक्य जननीं दीनामनूरुश्चाऽपि शङ्कितः ॥९५॥

---

ती नदी र वाग्वतीको सङ्गममा देवर्षिहरूले अघि स्नान गरेका थिए। देवताहरूले पनि ठूलो फल पाएको त्यो तीर्थ अगस्त्यतीर्थका नामले प्रसिद्ध छ। त्यहाँ स्नान गर्नाले सम्पूर्ण पापले मुक्त भएर मानिसहरू स्वर्ग जान्छन्। तल्लो योनिमा जन्मिएको भएता पनि मरेपछि उनीहरू अर्को जुनीमा ब्राह्मण हुन पुग्छन्। अगस्त्यतीर्थमा गएर मुनिहरू सधैँ स्नान गर्छन्। त्यस ठाउँमा स्नान गर्ने मानिसहरू सुखपूर्वक अगस्त्यको वासस्थान भएको स्वर्गमा जान्छन् ॥८४-८६॥

हे ऋषि हो ! फेरि निर्मल त्यो जलको माहात्म्य सुन – जुन कुरा अघि कार्तिक स्वामीले आफ्ना भक्तलाई बताउनुभएको थियो ॥८७॥

कार्तिक स्वामीले भन्नुभयो – विमलाम्बु नदीको नजिकै सुन्दर नागराज थिए। सत्यले गर्दा गरुडले दया राखेर तिनलाई नखाई अलङ्कार बनाएका थिए ॥८८॥

अगस्त्य मुनिले भन्नुभयो – खान छोडेर गरुड कसरी त्यो सर्पप्रति दयालु भएर बसे ? हे प्रभो ! यो कुरा मलाई बताउनुहोस् ॥८९॥

कार्तिक स्वामीले भन्नुभयो – कद्रु आफ्ना सुन्दर र सन्तुष्ट छोराहरूलाई देखेर ज्यादै प्रसन्न भइन्। विनताले आफ्ना दुई छोराहरूलाई देखेर निन्याउरो मुख लगाइन् किनकि दुबै छोरा तिघ्रा नभएका डरलाग्दो अनुहार भएका हुनाले उनी दुःखित थिइन्। कुनै दिन नागहरूले सभामा एकैचोटि गएर आमा र सौतेनी आमालाई हेरी ढोगी दिए। त्यस सभामा भाइसहित भएका गरुड र आफ्नी सौतेनी आमालाई देखेर नागहरूले एकैचोटि ठूलो उपहास गरे। अडबाङ्गे शरीर भएका सौतेनी छोराहरूको मुखबाट निस्किएको उपहास सुनेर विनता दुःखित भइन्। निन्याउरो मुख लगाएकी आमालाई गरुडले बारम्बार सोधे। निन्याउरो मुख लगाएकी आमालाई देखेर अरुण पनि ज्यादै सशङ्कित बने ॥९०-९५॥

---

४६. विख्यातम् इति न.सं.पु.पाठः।
४७. अन्त्यजोऽपि द्विजा भूत्वा देहान्ते च न संशय इति न.सं.पु.पाठः।
४८. स्नायते मुनिभिः सदा इति न.सं.पु.पाठः।
४९. तस्मै स्कन्दः स्वभक्तिने इति न.सं.पु.पाठः।
५०. दयाश्रिता इति न.सं.पु.पाठः।
५१. तुष्यस्तनया प्रतिमानना इति न.सं.पु.पाठः।
५२. पक्षिणमुरुहीनञ्च विकटयस्यं प्रदुःखिता इति न.सं.पु.पाठः।
५३. ववन्दुर्युगपद्गत्वा इति न.सं.पु.पाठः।
५४. प्रेक्ष्यमाणाः समं हि तौ इति न.सं.पु.पाठः।

गरुड उवाच

किन्ते दीनाननं मातः कस्माद् भयमुपस्थितम्। पित्रा वा गर्हितं तेऽद्य चान्यैर्वाशु वदाधुना ॥९६॥

विनतोवाच

किं वो वक्ष्यामि वत्साद्य विमातृजोपहासकैः। त्वदीक्षणोपहासैर्मे नित्यं मनः सुदुःखितम्[५६] ॥९७॥

स्कन्द उवाच

श्रुत्वा मातुर्वचस्तार्क्ष्यो विमातृहास्यहेतुकम्। अमर्षैः पूरितो मात्रे प्रोवाच सहसा रुषा ॥९८॥

गरुड उवाच

वद मातर्वधोपायं जेष्यामि खलु[५७] तत्सुतान्। जित्वा तान् भक्षयिष्यामि विपक्षान् हि विमातृजान्॥९९॥

विनतोवाच

कद्रुसुताः कथं जेयाः त्वया पतत्रिणा सुत। रुद्रवरोद्धता वीराः क्वच्चित्ते तदलङ्कृताः ॥१००॥
रचितव्य उपायस्ते[५८] प्रारब्धं येन दृश्यते। अपारास्यां गतिर्धातुः सद्भिः सदसतोः परा[५९] ॥१०१॥
विमलाम्बुमहातीर्थे तप्तं यत्रोमया पुरा। उपदेशं पितुर्नीत्वा हिमवति प्रतप्यताम् ॥१०२॥

स्कन्द उवाच

उपदिष्टौ जनन्या तौ पित्राशु मनुनार्चितौ। वाग्वतीसम्भवो यत्र ययतुः पततां वरौ ॥१०३॥
विमलाम्बुमहातीर्थे जितक्रोधौ जितेन्द्रियौ। भक्त्याराधयतां तौ हि द्वादशाब्दं खगेश्वरौ[६०] ॥१०४॥
अरुणः स च तेपाते समाराध्य[६१] पितामहम्। संयतेन्द्रियवर्गौ वै निराहारौ च पर्वसु ॥१०५॥

---

गरुडले भने – हे आमा ! तपाईंको मुख किन निन्याउरो छ ? तपाईंलाई कसबाट डर पैदा भयो ? बुबा अथवा कसैले गाली पो गऱ्यो कि? तुरुन्त भन्नुहोस् ॥९६॥

विनताले भनिन् – हे बाबु हो ! म तिमीहरूलाई के भनूँ ? सौतेनी आमाका छोराहरूले तिमीहरूलाई गरेको उपहास देखेर मेरो मन सधैँ चिन्तित भएको छ ॥९७॥

कार्तिक स्वामीले भन्नुभयो – सौतेनी आमाका छोराहरूको उपहासबाट निन्याउरो मुख लगाएको कारण आमाबाट सुनेर गरुडले रिसाउँदै हत्त न पत्त आमालाई भन्न लागे ॥९८॥

गरुडले भने – हे आमा ! तिनीहरूलाई मार्ने उपाय मलाई बताउनुहोस्। म सौतेनी आमाका छोराहरूलाई जित्न सकूँ, ती सौतेनी आमाका छोराहरूलाई जितेर खान सकूँ ॥९९॥

विनताले भनिन् – हे छोरा ! ती कद्रुका छोराहरूलाई पक्षीले कसरी जित्न सक्छ ? फेरि तिनीहरू शिवजीबाट वर पाएर वीर भएका छन्। हे बाबु ! यो साहस छोड। जसबाट तिम्रो भाग्योदय हुन्छ, त्यो उपाय विचार गर। ब्रह्माका पार पाउन नसकिने सत् र असत् दुईवटा गति छन्। जहाँ पहिले विमलाम्बु नदीको महातीर्थमा उमाले तपस्या बाबुको आज्ञा लिएर गर्नुभएको थियो, त्यसै हिमालय क्षेत्रमा गई तपस्या गर ॥१०२॥

कार्तिक स्वामीले भन्नुभयो – आमाको उपदेश र बाबुको मन्त्र लिएर उनीहरूको आदर गर्दै जहाँबाट वाग्वती पैदा भएकी थिइन्, त्यसै ठाउँमा गरुड र अरूण गए। विमलाम्बु नाम गरेको ठूलो तीर्थमा अरुण र गरुडले क्रोध एवं इन्द्रियलाई जितेर बाह्र वर्षसम्म भक्तिपूर्वक ब्रह्माको आराधना गरे। अरुणले त्यसै ठाउँमा इन्द्रियलाई वशमा राख्दै सबै पर्वमा निराहार बसी ब्रह्माको आराधना गरेर तपस्या गरे ॥१०३–१०५॥

---

५४. प्रमाथिनम् इति न.सं.पु.पाठः।
५६. हि मे मातर्जयिष्यामि इति न.सं.पु.पाठः।
५७. रचितव्यमुपायन्ते इति न.सं.पु.पाठः।
५८. सतोऽयमसतोऽपरा इति न.सं.पु.पाठः।
५९. आराधयद्विधिं भक्त्या द्वादशाब्दं खगेश्वर इति न.सं.पु.पाठः।
६०. अरूणस्तत्र तेपेऽसौ आराधय इति न.सं.पु.पाठः।

उभौ द्वादशवर्षान्ते चोमातीर्थे जलाप्लुतौ। सिते पक्षे हि कार्त्तिक्याः कृत्तिकर्क्षे भृगोर्दिने ॥१०६॥
नक्तातीतेऽह्नि सम्भूते समुत्तीर्णे जलाद् खगौ। ददृशतुः स्वमात्मानं सौवर्णं कनकप्रभम् ॥१०७॥
ददौ धाता वरं ताभ्यां तदन्तिकं समाव्रजन्। वत्स तार्क्ष्य महावीर पक्षिणोरीदृशं तपः ॥१०८॥
तुष्टोऽहं तपसा वोऽद्य ददामि ह्यचलं वरम्। अद्यादि भवितारौ च सततं जीविनौ चिरम् ॥१०९॥
देवासुरैर्नरैश्चान्यैः पशुपक्षिसरीसृपैः। अजेयौ भवितारौ च सर्वोपरि बलान्वितौ ॥११०॥

खगेश्वर उवाच

पुरा कृतप्रतिज्ञोऽहं याच्यसे त्वं पितामह। लब्धुं भवत्प्रसादात्तच्छत्रुमर्दनमोजसा ॥१११॥

स्कन्द उवाच

ओमिति च प्रतिश्रुत्य ब्रह्मलोकं ययौ विधिः। दत्त्वा वरं हि तार्क्ष्याय चारुणाय तथाविधम् ॥११२॥
तत्क्षणे सुन्दरो नागश्चचार तत्र स्वेच्छया[६२]। तं द्रुतं प्रेक्ष्य दुद्राव तार्क्ष्यो रुषा जिघृक्षया ॥११३॥
जग्राह सुन्दरं तार्क्ष्यो ग्रावे जानु प्ररोपयन्। स चुक्रोश भृशं भीत्या तदुत्सारव्यथान्वितः ॥११४॥
दुद्रुवुस्ते तदाकर्ण्य तार्क्ष्यं प्रति भुजङ्गमाः। युयुधुः सह तार्क्ष्येण ताडयन्तः करादिभिः[६३] ॥११५॥
यावत्पञ्चदिनं[६४] व्याप्य दंष्ट्रानखान् प्रसारयन्। मुहुः प्रोड्डीनयामास पक्षाभ्यां गरुडो खगः ॥११६॥
तद्वातैर्व्यथिता नागा गरुडेन समं तदा। विलानि दुद्रुवुः शीघ्रं सन्त्यज्यायोधनं तदा ॥११७॥
भक्षितुमुद्यतस्तार्क्ष्यो बिलाभिमुखमागतम्। भृशं रुषाद्रवत्तार्क्ष्यः सोऽप्युवाच शनैः शनैः ॥११८॥

---

बाह्र वर्षको अन्त्यमा कार्तिक महिनाको शुक्ल पक्षको कृत्तिका नक्षत्र परेको शुक्रबारका दिन रात बितेर उज्यालो भएपछि ती दुई उमातीर्थमा स्नान गरेर जलबाट निस्किए। त्यसपछि उनीहरूले सुवर्णमय भएको आफ्नो आत्मालाई देखे ॥१०६-१०७॥

त्यसपछि ब्रह्माले उनीहरूको नजिकै आएर ती दुईलाई वर दिनुभयो। हे बाबु तार्क्ष्य ! हे महावीर ! तिमीजस्ता पक्षीहरूको पनि यति ठुलो तपस्या ? म तिमीहरूको तपस्याबाट प्रसन्न भएँ, तिमीहरूलाई अमर हुने वर दिन्छु – आजदेखि तिमीहरू धेरै समयसम्म बाँच्न सक्ने बन। सबैभन्दा बलिया भएका तिमीहरूलाई देवता, राक्षस, मान्छे, पशुपक्षी र सर्पले पनि जित्न नसकून् ॥१०८-११०॥

गरुडले भने – हे पितामह ! पहिले मैले जुन प्रतिज्ञा गरेर आएको थिएँ, तपाईंसँग त्यही शत्रुलाई नाश गर्न सक्ने तेज प्राप्तिका लागि प्रार्थना गर्दछु ॥१११॥

कार्तिक स्वामीले भन्नुभयो – ब्रह्माजी त्यो कुरालाई स्वीकार गर्दै गरुड र अरूलाई उनीहरूले चाहेजस्तो वर दिएर ब्रह्मलोक जानुभयो। त्यसैबेला एउटा सुन्दर नाग त्यहाँ हिँडिरहेको थियो, त्यसलाई देखेर गरुड रीसले समात्नका लागि दौडिए। ढुङ्गामा घुँडा धसाएर गरुडले त्यस नागलाई समाते। त्यसको हिर्काइले पीडाले व्यथित भएर त्यो नाग पनि गरुडदेखि ज्यादै क्रुद्ध भयो। त्यो सुनेर सबै सर्पहरू गरुड भएतिर दौडिए। सबैले पुच्छरले गरुडलाई हिर्काउँदै युद्ध गरे। पाँच वर्षसम्म नङ, दाह्रा फिँजाएर बारम्बार गरुड पक्षीले आफ्नो पखेटाले तिनीहरूलाई उडाए ॥११६॥ गडरुको हावाले पीडित नागहरू त्यसबेला गरुडसित लड्न छोडेर तुरुन्त छिद्रभित्र लुके। गरुड पनि त्यस प्वालभित्र पस्न लागेको नागलाई खानका लागि झम्टिए, त्यसबेला नागले गरुडसित विस्तारै भन्यो ॥११२-११८॥

---

६१. नागश्चरयामास तत्र वै इति न.सं.पु.पाठः। ६२. ताडयन् करलाङ्गुलै इति न.सं.पु.पाठः।
६३. यावत्पञ्चसमाम् इति न.सं.पु.पाठः।

भ्रातर्भक्षय मा मा मां वक्तव्यं शृणु मद्वचः। यदि भक्षसि मां वीर त्वमेव चावशिष्यसे[६५] ॥११९॥
विमुच्यतां महावीर सहस्राणि प्रभुङ्क्ष्यसे। नागान्तकाऽभिधानन्ते मां त्यक्त्वापि[६६] भविष्यति ॥१२०॥

तार्क्ष्य उवाच

कथं ते लक्षितास्त्रासिन् विवरे गूढरूपिणः। हसन्तो वीक्ष्य मद्देहं द्विजिह्वाः शत्रवो मताः ॥१२१॥

सुन्दर उवाच

एकाकिनं परित्यज्य स्वं स्वं बिलं प्रदुद्रुवुः। आयोधनं सजीवं मां द्विजिह्वा जातिचेष्टिताः ॥१२२॥
अतस्तान्दर्शयिष्येऽहं भवन्तं मुक्तविग्रहम्। सहैव भवता भ्रातर्यन्त्रस्था गूढरूपिणः[६७] ॥१२३॥

तार्क्ष्य उवाच

यद्येवं भाषसे नाग दर्शयिष्यसि मां हि तान्। त्वद्विग्रहेण देहोऽयं विभूष्यते महानिशम् ॥१२४॥

नाग उवाच

क्षन्तव्यं भवता मेऽद्य चाहोरात्रं खगेश्वर। सतीं पत्नीञ्च सम्बोध्य तस्यां[६८] संन्यस्य बालकान् ॥१२५॥
अत्र प्रत्यागमिष्यामि श्रीमतामन्तिके ध्रुवम्। यद्येवं नाऽऽगमिष्यामि शपेयं शृणु वीरराट् ॥१२६॥
यावदस्ति च मेदिन्यां वृजिनं कलुषात्मनाम्। असह्यभारं तत्सर्वं धारयिष्ये तदान्यथा ॥१२७॥
पतिष्यतु ह्ययं देहो लिप्त एतैश्च किल्विषैः। यद्येवं नाऽऽगमिष्यामि भविष्याम्यशनं तव ॥१२८॥

---

हे भाइ ! मलाई नखाऊ, नखाऊ। मेरो भनाइ सुन – हे वीर ! यदि मलाई खायौ भने तिमी एक्लै हुनेछौ, अर्को कोही हुनेछैन। हे महावीर ! मलाई छोड, अरू हजार खान पाउँछौ, मलाई छोड्दा पनि तिम्रो नाम नागको शत्रु भन्ने हुनेछ ॥११९-१२०॥

गरुडले भने – तैंले कसरी यो प्वालमा नागहरू लुकेर बसेका छन् भन्ने थाहा पाइस् ? मेरो शरीर देखेर हाँस्ने सबै नागहरू मेरा शत्रु हुन् ॥१२१॥

सुन्दर नागले भन्यो – युद्धमा एक्लै मलाई छाडेर ती नागहरू आफ्नो–आफ्नो प्वालमा भागे। तिनीहरूले दुईजिब्रे जातिले गर्ने व्यवहार मसित गरे। यसैले हे दाजु ! मेरो शरीर छोडिदिनुहोस्, लुकेर बसेका तिनीहरूलाई म देखाइदिन्छु ॥१२२-१२३॥

गरुडले भने – हे नाग ! यदि मलाई ती नागहरू देखाइदिन्छौ भने तिम्रो शरीरलाई म सधैँ अलङ्कार बनाउँछु, केही पनि गर्दिन ॥१२४॥

नागले भने – मलाई एक रात तपाईंले क्षमा गरिदिनुपर्छ, म आफ्नी पतिव्रता पत्नीलाई सबै कुरा बताएर उनलाई यी बालकहरू सुम्पिएर तपाईंको नजिक अवश्य आउनेछु। हे वीर ! यदि आइनँ भने म किरिया खान्छु, सुन्नुहोस्। पृथ्वीमा जति पनि पापीहरू छन्, तिनीहरूको जति पाप छ, त्यो सबै भार म बोक्नेछु। यिनै पापहरूले ग्रस्त भएर यो शरीर अधोगतिमा जाओस्, यदि म आइनँ भने म तपाईंको भोजन बन्नेछु ॥१२५-१२८॥

---

६४. एक एव हि नापर इति न.सं.पु.पाठः। ६५. त्यज्यैव इति न.सं.पु.पाठः।
६६. यद्यपि भवता भ्रातर्यन्त्ररथगूढरूपिण इति न.सं.पु.पाठः। ६७. तस्यै इति न.सं.पु.पाठः।

स्कन्द उवाच

प्रतिश्रुत्य खगो नागं प्रास्थापयत् स्वकं बिलम्। गत्वाऽसौ वर्णयामास भृत्यांस्तांश्च[६९] प्रबोधयन् ॥१२९॥
भृत्यैर्निषेधिते नागस्तानाश्वास्याप्रबोधयत्[७०]। न त्याज्यं जीवने[७१] सत्यं यदि कल्पान्तजीविभिः ॥१३०॥
प्रत्याययौ समाश्वास्य भृत्यान् स गरुडान्तिकम् ॥१३१॥
उवाच साधु तं तार्क्ष्यः त्वं चिरायुश्च सद्व्रतः[७२]। इत्युक्ता तं[७३] समादाय उवरोहारञ्चकार सः ॥१३२॥
सुन्दरश्च ततः तार्क्ष्यं तच्छुषिरमदर्शयत्। उद्विदार्याह्वयच्छिद्रमनन्तं पततां वरः ॥१३३॥
अनन्तोऽपि रुषाविष्टो विनिर्ययौ द्रुतं बिलात्। सहस्रभोगसंयुक्तो ललज्जिह्वः सुभीषणः ॥१३४॥
उद्ददंश रुषा तार्क्ष्यं जिह्वाभिर्लाङ्गलैः स च[७४]। वैनतेयो रुषा पूर्णः पक्षपातानिलैर्भृशम् ॥१३५॥
अनन्तं ताडयामास रुद्रः क्षये यथा पुरा। तापयन् विषतप्तास्यं स ददंश खगेश्वरम् ॥१३६॥
युगपत् सर्वभागैः सः शलभास्यैरिव द्रुमाः[७५]। मुखपूरिततोयैः सः पक्षपातानिलैर्नखैः ॥१३७॥
वर्षन् स पीडयामास काल इव क्षयागमे। दीप्ते वीर्ये खगेन्द्रस्य[७६] चाऽप्रयत्ने त्वहीश्वरे ॥१३८॥
उद्भूतो नागभोगात् स विष्णुश्चतुर्भुजोऽव्ययः। प्रणमन् भक्तितोऽङ्गेन सन्त्यज्यायोधनं महत् ॥१३९॥
तुष्टाव गरुडो विष्णुं परिक्रम्य मुहुर्मुदा। हृद्वागङ्गैर्नतोस्म्यद्य हृत्स्थाय विष्णवे नमः ॥१४०॥
देहाभ्यन्तरसंस्थेन प्रोज्जृम्भितासुहृद्गणः। किङ्करोऽहं तवेशस्य जातोऽहं प्राक् सुपुण्यतः ॥१४१॥

---

कार्तिक स्वामीले भन्नुभयो – यो कुरा सुनेर गरुडले नागलाई आफ्नो छिद्रमा जान दिए। उसले गएर आफ्नो नोकरहरूलाई सम्झाउँदै सबै कुरा बतायो। उसका नोकरहरूले उसलाई निषेध गरेता पनि त्यस नागले कल्पको अन्तसम्म बाँच्न पाइन्छ भने पनि सत्य त्याग्नु हुँदैन भनी तिनीहरूलाई सम्झाइ बुझाइ गरेर गरुडको नजिकै आयो। गरुडले त्यस नागलाई देखेर सज्जन रहेछौ, सत्य मार्गमा हिँड्ने तिमी चिरायु भयौ भनेर त्यस नागलाई समाती छातीमा हार बनाए। त्यसपछि सुन्दर नागले गरुडलाई त्यो छिद्र देखाइदियो। गरुडले पनि छिद्र उघारेर अनन्त नाम गरेको नागलाई बोलाए ॥१२९–१३३॥

हजार फणा र चञ्चल जिब्रो भएका डरलाग्दा अनन्त नाग पनि रिसाउँदै छिद्रबाट तुरुन्त बाहिर निस्किए। त्यसपछि जिब्राले र पुच्छरले अनन्तले गरुडलाई खूबसित हिर्काए। गरुडले पनि रिसाएर पखेटाका हावाले खूबसित हाने। जसरी प्रलयकालमा रुद्र रिसाउनुभएको थियो, त्यसरी नै रिसाएर गरुडले नङ्ग्रा र चुच्चाले विषैलो मुख भएका अनन्त नागलाई ठुँगे। जसरी सलहले ठूला-ठूला रुखहरूमा एकैपटक आक्रमण गर्छन्, त्यसैगरी चुच्चोमा पानी लिएर सर्पका राजा वीर गरुडले पखेटाको हावा तथा नङ्ग्राले अनन्तका अङ्ग–प्रत्यङ्गहरूमा प्रलयकालको वर्षाजस्तै आक्रमण गरेर पीडा दिए ॥१३३–१३८॥

त्यसपछि अनन्त नागको शरीरबाट अविनाशी चार भुजा भएका भगवान् विष्णु पैदा हुनुभयो। त्यो देखेर गरुडले लड्न छोडेर सम्पूर्ण अङ्ग झुकाई उहाँलाई नमस्कार गरे। विष्णुलाई परिक्रमा गरेर अत्यन्त प्रसन्न हुँदै गरुडले भगवान्को स्तुति गरे – हृदय, बोली, अङ्ग सबैबाट हृदयमा रहेका आद्य भगवान् विष्णुलाई नमस्कार छ हे भगवन् ! हे अन्तर्यामी ! सबैको हृदयमा वास गर्ने हे विष्णु ! पूर्वजन्मको पुण्यको प्रभावले गर्दा म हजुरको दास हुन आएको छु ॥१३९–१४१॥

---

६८. भृत्येभ्यश्च इति न.सं.पु.पाठः।
६९. नागस्तानाश्वास्य प्रबोधयन् इति न.सं.पु.पाठः।
७०. जीवनै इति न.सं.पु.पाठः।
७१. साधु साध्विति तं तार्क्ष्यः सत्यात्मा त्वं चिरायुष इति न.सं.पु.पाठः।
७२. तमाहत्य इति न.सं.पु.पाठः।
७३. जिह्वाभिर्लाङ्गुलैर्भ्नता इति न.सं.पु.पाठः।
७४. द्रुमम् इति न.सं.पु.पाठः।
७५. गरुडे प्रवरे वीरे इति न.सं.पु.पाठः।

नमस्ते विश्वसृग्देव गोविन्दाऽच्युत केशव। क्षन्तव्यं मे तदागो वा भवता सह युद्धजम् ॥१४२॥
नामभिर्विविधैश्चाऽन्यैरेवं तत्स्तुतिभिर्विभुः। तुष्ट उवाच तस्मै सः वरं दातुं हरिस्तदा ॥१४३॥
भक्त ताक्ष्र्य महावीर तुष्टोऽहं ते पराक्रमैः। अष्टौ च भोगिनो हित्वा मद्रूपाँस्तानहीश्वरान् ॥१४४॥
भक्षय भुजगाँश्चाऽन्यान् प्रतिज्ञा यर्हि विद्यते। वहनीयो ह्यहं नित्यं यच्छ्रुत्वा इति पक्षिराट् ॥१४५॥
वहे ह्यहं विभुं भूमन् दासत्वेन निरन्तरम्। मां क्षणमपि मां मुञ्च यस्माद् भद्रं भविष्यति ॥१४६॥
प्रतिश्रुत्य हरिश्चैव चाऽरुरोह खगेश्वरम्। दोलाचलं ययौ विष्णुस्तस्थौ स्वीये च स्वाश्रमे[७७] ॥१४७॥
अद्यापि भक्षयन्नास्ते[७८] प्रावृट्काले भुजङ्गमान्। विष्णुभक्तो द्विजन्मार्यो हित्वा तानष्टभोगिनः ॥१४८॥
तत्तीर्थे पूषणः स्नात्वा चाऽद्राक्षीदरुणं पुनः। मधुरयँश्च सत्येन चाऽकरोत्तं स्वसारथिम् ॥१४९॥
ये शृण्वन्ति च वाग्वत्याः प्रोद्भूतायाः शिवास्यतः[७९]। दिव्यां कथां महापुण्यां तेषां पुण्यफलं शृणु ॥१५०॥
जन्मार्जितैर्महत्पापैर्विनिर्मुक्ता हि सान्वयाः। दिव्ययानैर्महोल्लासैर्गच्छन्ति शिवमन्दिरम् ॥१५१॥
कुष्ठवान्मुच्यते कुष्ठात् श्रुत्वा चैतत्कथां शिवाम्। दुःखात्प्रमुच्यते दुःखी रोगी रोगैश्च मुच्यते ॥१५२॥
अपुत्रो लभते पुत्रं निर्धनो धनवान् भवेत्। इत्थमेव[८०] च नारीणां कथाश्रवणतः फलम् ॥१५३॥

सा वाग्वती लोकसुपावनी वै रुद्राख्यया निम्नगया च सार्द्धम्।
शम्भोर्हि चूडोद्भवया च भूयः त्रैलोक्यपुण्या रुरुचे सुधोदा ॥१५४॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे वाग्वतीसम्भवो नाम सप्ताशीतितमोऽध्यायः ॥८७॥

---

हे विश्वस्रष्ट्य गोविन्द ! हे केशव ! हजुरसँग मैले जुन युद्ध गरेँ, त्यो मेरो अपराध क्षमा गरिदिनुहोस्। विभिन्न अरू पनि नामहरू लिएर गरुडले गरेको स्तुति सुनेर भगवान् प्रसन्न हुनुभयो र गरुडलाई वर दिनका लागि उहाँले भन्नुभयो – हे भक्त ! हे गरुड ! हे महावीर ! म तिम्रो पराक्रम देखेर प्रसन्न भएँ। यदि तिम्रो नागहरूलाई खाने प्रतिज्ञा छ भने मेरो मूर्तिस्वरूप भएका आठवटा नागहरूलाई छोडेर अरू नागहरूलाई खाऊ, तिमीले सधैँ मलाई बोक्नुपर्छ। त्यो कुरा सुनेर गरुडले भने – हे पूजनीय ईश्वर ! म हजुरको दास हुँ, मलाई एकछिन पनि नछाड्नुहोस्। यसबाट ठूलो कल्याण हुन्छ। गरुडको यो कुरा स्वीकार गरेर भगवान् विष्णु गरुडमाथि चढ्नुभयो र दोलाचल अर्थात् चाँगुनारायणमा रहेको आफ्नो आश्रममा आउनुभयो। अहिलेसम्म पनि ती आठथरी नागहरूलाई छोडेर विष्णुका भक्त गरुडले वर्षा अगाडि सर्पहरू खान्छन् ॥१४२-१४८॥

त्यसै तीर्थमा स्नान गर्न लागेका अरुणलाई भगवान् सूर्यनारायणले देख्नुभयो र फकाएर आफ्नो सारथि बनाउनुभयो। जसले शिवजीको मुखबाट निस्किएको पुण्यदायिनी वाग्वतीको दिव्यकथा सुन्छ, त्यसको फल सुन्नुहोस्। त्यस्तो व्यक्ति सपरिवार जन्मभरि गरेका ठूला-ठूला पापबाट मुक्त हुन्छ। दिव्य यानमा चढेर ठूलो उत्सव गर्दै शिवजीको लोकमा जान्छ। यो कल्याणदायी कथा सुन्नाले कुष्ठरोगी कुष्ठरोगबाट मुक्त हुन्छ, दुःखी दुःखबाट मुक्त हुन्छ र रोगी रोगबाट छुट्कारा पाउँछ। जसका सन्तान छैनन्, त्यसले पुत्र पाउँछ, गरीबले सुन्यो भने धनवान् हुन्छ। स्त्रीजातिहरूले सुने भने त्यस्तै फल पाउँछन् ॥१४९-१५३॥

ती वाग्वती रुद्रा नाम गरेकी नदीसँग मिलेर संसारलाई पवित्र तुल्याउँछिन्। शिवजीको शिरबाट पैदा भएकी चण्डोद्भवासँग मिलेर तीनै लोकलाई पवित्र तुल्याउने वाग्मतीमा अत्यन्त स्वादिलो जल रहेको छ ॥१५४॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा वाग्वतीको उत्पत्तिनामक सतासिऔं अध्याय पूरा भयो।

---

७६. स्वीकयमाश्रमम् इति न.सं.पु.पाठः।
७७. भक्षयामास इति न.सं.पु.पाठः।
७८. शिवादगिरा इति न.सं.पु.पाठः।
७९. तथैव च हि इति न.सं.पु.पाठः।

# अष्टाशीतितमोऽध्यायः

## शङ्खमूलतीर्थस्य माहात्म्यम्

### अगस्त्य उवाच

वागमृतेन मां स्कन्द ! तल्लोलुपं प्रसिञ्चय। रुद्रधारेति विख्याता तदुत्पत्तिः कथं वद ॥१॥
मणिमत्याः समुत्पत्तिः कथं को महिमा वद[१]। तयोश्च[२] सङ्गमे तीर्थे स्नानात्कियत्फलं भवेत् ॥२॥
एतत्सर्वं महासेन ! श्रोतुकामाय दिश्यताम्।

### स्कन्द उवाच

आसीच्छङ्खासुरः पूर्वं रुद्रभक्तो हि निर्जनः ॥३॥
वाग्वत्या मणिमत्याश्च सङ्गमे जीवने प्लवन्। द्वादशाब्दं तपश्चक्रे चाऽऽराधयन्महेश्वरम् ॥४॥
शिव शिवेति रुद्रेति शङ्खो ह्यहर्निशं ब्रुवन्। वरं दातुं ततस्तस्मै हर्षोत्फुल्लेक्षणो हरः ॥५॥
अम्बरात्प्रययौ तत्र स्वरूपं तं प्रदर्शयन्। तत्र पातालगङ्गा सा चोर्ध्वं निःसृत्य चाययौ ॥६॥
पादुकां स्नापयन्ती सा[३] रुद्रस्य शिरसोऽपतत्। ततश्च सा महापुण्या नदीभूता सुनिर्मला ॥७॥
सा चोवाहाऽनिशं[४] सम्यक् तयोः सुसङ्गमे परे। तदादि रुद्रधारेति विख्याता भुवि दुर्लभा ॥८॥
त्रैलोक्यपावनी साभूत्सर्वलोकेप्सितप्रदा। रुद्रधारोदयं तीर्थं प्रेक्ष्य पापैः स मुच्यते ॥९॥
स्नात्वा तत्र नरो भक्त्या रुद्रलोकं प्रगच्छति। ततो रुद्र उवाचेदं भक्ताय शङ्खवत्सलः ॥१०॥
अद्यादि त्वं चिरं जीव्यास्तव लोकैरवध्यता[५]। मां मुञ्च मत्प्रियं तीर्थं सर्वकालुष्यनाशनम् ॥११॥

---

## अध्याय – ८८

### शङ्खमूलतीर्थको माहात्म्य

अगस्त्य मुनिले भन्नुभयो– हे कार्तिक स्वामी ! माहात्म्य सुन्नका लागि लुब्ध भएको मलाई वचनरूपी अमृतद्वारा सेचन गर्नुहोस्। रुद्रधारा नाम गरेकी नदी प्रसिद्ध छिन्, तिनको उत्पत्ति कसरी भयो ? बताउनुहोस्। मणिमतीको उत्पत्ति र माहात्म्य कस्तो छ ? तिनीहरूको सङ्गम भएको तीर्थमा स्नान गर्नाले कस्तो फल प्राप्त हुन्छ ? हे कार्तिक स्वामी ! सुन्न खोज्ने मेरा निमित्त यी सबै कुरा बताउनुहोस् ॥१–२½॥

कार्तिक स्वामीले भन्नुभयो – अघि शङ्खासुर नाम गरेको शिवजीको भक्त थियो। एकान्तप्रेमी त्यो राक्षसले वाग्वती र मणिमती नदीको सङ्गमको पानीमा स्नान गरेर भगवान् शिवजीको आराधना गरी रातदिन शिव–शिव रुद्र–रुद्र भन्दै बाह्र वर्षसम्म तपस्या गऱ्यो ॥३–४॥

त्यसपछि आफ्नो रूप देखाउँदै भगवान् शङ्कर हर्षले ठूला–ठूला आँखा लगाएर त्यस असुरलाई वर दिन आकाशबाट आउनुभयो। त्यसैबेला त्यस ठाउँमा भक्तिपूर्वक भगवान् शङ्करको खराउलाई पखाल्दै पातालगङ्गा शिवजीको शिरबाट झरिन्। त्यसपछि ती दुई नदीको अर्को सङ्गममा पुग्ने गरी अत्यन्त पुण्यदायिनी नदी निर्मल जल लिएर सधैं बग्न थालिन्। त्यसै समयदेखि सम्पूर्ण प्राणीको इच्छालाई पूर्ण गर्ने र तीनै लोकलाई पवित्र तुल्याउने भएकी यी नदी पृथ्वीमा दुर्लभ रुद्रधारा नामले प्रसिद्ध भइन् ॥५–८½॥

रुद्रधारा निस्किएको तीर्थमा जसले दर्शन गर्छ त्यो व्यक्ति सम्पूर्ण पापबाट मुक्त हुन्छ। त्यहाँ भक्तिपूर्वक स्नान गर्ने मानिस रुद्रलोक जान्छ। त्यसपछि शङ्खासुरलाई माया गर्ने भगवान् शङ्करले भक्त त्यस असुरलाई भन्नुभयो – आजदेखि तिमी चिरञ्जीवी भयौ, तिमीलाई कुनै पनि प्राणीले मार्न सक्ने छैनन्। सम्पूर्ण पापलाई पखाल्ने यो मेरो प्यारो तीर्थ नछोड ॥९–११॥

---

१. कथं तात माहात्म्यं संभवं पुन इति न.सं.पु.पाठः।
२. तासाञ्च इति न.सं.पु.पाठः।
३. स्नापयन् पादुकां भक्त्या इति न.सं.पु.पाठः।
४. प्रववाहानिशम् इति न.सं.पु.पाठः।
५. सर्वलोकैरवध्यत इति न.सं.पु.पाठः।

शङ्खासुर उवाच

तिष्ठाम्यत्र विभो ! नित्यं त्वत्[६]पादावर्चयन्मुदा। यावज्जीवं हि देहान्ते पूजयिष्यामि[७] वै प्रभो ॥१२॥
प्रतिश्रुत्य विभुस्तस्मै तिरोधानं ययौ दिवि। दर्शयन् विश्वरूपं स्वं सौम्यं भयानकं तदा ॥१३॥
तदादि सन्ततं शङ्खो न मुञ्चति कदापि वै। तासां सुसङ्गमे तीर्थे ब्राह्मलक्षाप्लुतोऽभवत् ॥१४॥
शङ्खासुरस्य सुस्थानं दृढमूलं यतोऽभवत्। लब्ध्वा महावरान् रुद्राच्छङ्खमूलं ततः स्मृतम् ॥१५॥
मणिमती नदी पुण्या रुद्रमौलिसमुद्भवा। वाग्वतीशमुखोद्भूता सर्वलोकप्रपाविनी ॥१६॥
तयोश्च सङ्गमाभ्यासे स्रोतस्यूर्ध्वं प्रतिसृता। जलं पातालगङ्गाया रुद्रपादोद्भवं शिवम् ॥१७॥
पवित्रं परमं तीर्थं स्नातकानां महत्फलम्। रुद्रधाराजलं पुण्यं भवेत्पापार्तिहारकम् ॥१८॥
अत ऊर्ध्वं प्रवक्ष्यामि मणिमत्याः समुद्भवम्। रुद्रचूडामणेस्तीर्थं सर्वकामफलप्रदम् ॥१९॥
आसीच्च मणिमान् शैल उदीच्यां दोलपर्वतात्[८]। तच्छेखरे विधात्रा च सुनिर्मितो ह्रदः पुरा ॥२०॥
मणिधातुमये शैले तीर्थं मणिशिलान्तरे। तत्र जजाप धाताऽसौ सर्वलोकहिताय च ॥२१॥
ह्रदमध्ये ततो धाता चावाहयन्महेश्वरम्। तन्मध्ये च समुद्भूतो मणिमौलिर्महाप्रभुः ॥२२॥
मणिलिङ्गमहेशस्य मणिचूडामणेर्मुने। प्रस्रवति जलं पुण्यं तस्मान्मणिमती नदी ॥२३॥
भूत्वा तरङ्गिणी श्रेष्ठा सा प्रोवाहाद्रिशेखरात्। नित्यं विराजते गङ्गा रुद्रमौलिसमुद्भवा ॥२४॥
अष्टम्यां स्नाति ना[९] यस्तु मेषस्थेऽर्के च पर्वसु। गोसहस्रफलं प्राप्य रुद्रलोकं स गच्छति ॥२५॥

---

शङ्खासुरले भन्यो – हे प्रभो ! म सधैँ यस ठाउँमा हजुरको पाऊको पूजा गर्दै जीवन रहेसम्म बस्नेछु, मरेपछि पूजा गरेर हजुर भएको ठाउँमा आउनेछु। यो कुरा स्वीकार गरेर भगवान् शङ्कर त्यस राक्षसलाई सौम्य तथा डरलाग्दो विश्वरूप देखाएर आकाशमा अन्तर्धान हुनुभयो। त्यस बेलादेखि निरन्तर त्यो शङ्खासुरले त्यो सङ्गमतीर्थलाई नछोडीकन ब्रह्माजीको दिनका हिसाबले लाख वर्षसम्म स्नान गऱ्यो। यस असल स्थानमा शिवबाट ठूलो वरदान पाएर त्यो राक्षस दह्रोसित बसेको हुँदा त्यो ठाउँको नाम शङ्खमूल भनियो ॥१२–१५॥

पवित्र मणिमती नदी शिवजीको शिरबाट पैदा भएकी हुन् भने सम्पूर्ण प्राणीलाई पवित्र तुल्याउने वाग्वती नदी शिवजीको मुखबाट पैदा भएकी हुन्। ती दुई नदीको सङ्गममा स्नान गरेर शिवजीका पादारविन्दबाट बगेकी, संसारलाई कल्याण गर्ने पातालगङ्गाको जलमा स्नान गऱ्यो भने मानिस सम्पूर्ण पापबाट मुक्त भएर ठूलो फल प्राप्त गर्छ। रुद्रधाराको जलमा स्नान गऱ्यो भने सम्पूर्ण पापलाई त्यागेर ठूलो पुण्य पाउँछ। यसपछि अब म सम्पूर्ण कामनालाई पूर्ण गर्ने रुद्रचूडामणि नाम गरेको तीर्थस्थल भएको मणिमतीको उत्पत्तिको बारेमा बताउँछु ॥१६–१९॥

दोलाचल पर्वतको उत्तरदिशामा मणिमान् नाम गरेको पर्वत छ, त्यसैको शिखरमा अघि ब्रह्माजीले एउटा तलाउ बनाउनुभएको थियो। मणि र धातुले बनेको त्यस पहाडमा मणिको ढुङ्गाका बीचमा एउटा तीर्थ छ। त्यसै ठाउँमा सम्पूर्ण प्राणीको हितका निमित्त ब्रह्माजीले जप गर्नुभएको थियो ॥२१॥ त्यसपछि ब्रह्माले त्यस तलाउको बीचमा भगवान् महेश्वरको आवाहन गर्नुभयो। त्यसैको बीचमा महाप्रभु मणि शिरमा लगाउने भगवान् शङ्कर पैदा हुनुभयो ॥२०–२२॥

मणिको लिङ्ग भएका महेश्वरको चूडामणिको मणिबाट पवित्र पानी झर्ने भएको हुँदा यस नदीलाई मणिमती भनिएको हो सधैँ तरङ्गयुक्त भएर यी उत्तम नदी पहाडको शिखरबाट बगेकी छन्। रुद्रको शिरबाट पैदा भएकी गङ्गा सधैँ सुशोभित भएकी छन्। जसले सूर्य मेष राशिमा रहेको बेला अर्थात् वैशाख महिनाको अष्टमी तिथिका दिन र पर्वहरूमा पनि यहाँ आएर स्नान गर्छ, त्यो व्यक्ति हजार गाई दान गरेको फल प्राप्त गरी रुद्रलोक जान्छ ॥२३–२५॥

---

६. तव इति न.सं.पु.पाठः।
७. समर्चयन् त्वेष्यति इति न.सं.पु.पाठः।
८. शैलो दोलाद्रेरुदीच्यां दिशि इति न.सं.पु.पाठः।
९. स्नायते इति न.सं.पु.पाठः।

श्रावणीपूर्णिमायां यः संस्नाति[१०] विधिवत्सकृत्। गवां कोटिफलं लब्ध्वा रुद्रलोकं व्रजेत्किल ॥२६॥
हव्यं कव्यं जपं स्नानं दानं तत्र करोति यः। सप्तजन्मार्जितं पापं त्यक्त्वा प्राप्नोति शाङ्करम् ॥२७॥
मणिमती नदीश्रेष्ठा वाग्वती लोकपूजिता। रुद्रधारा महापुण्या त्रिगङ्गाः स्युरिमाश्च ताः[११] ॥२८॥
मणिलिङ्गस्य शीर्षाद्यदुत्पपाताद्रिशेखरात्। तस्मात्पूज्या सुरैर्देवैर्मणिमतीति विश्रुता ॥२९॥
सा चैव पावनी लोके सर्वलोकेप्सितप्रदा। सैव प्रसेविता देवैर्मुमुक्षुभिर्विशेषतः ॥३०॥
तद् ह्रदे स्नाति प्रत्यब्दं यो लभेत परं पदम्[१२]। फाल्गुनस्य सिताष्टम्यां सङ्क्रान्तिषु कुहौ तथा ॥३१॥
मणिमत्यां सुपुण्यायां यत्र कुत्रापि पण्डितः। स्नाति यो[१३] विधिवद् भक्त्या शिवलोके महीयते ॥३२॥
संस्नाति[१४] मणिमत्याञ्च या नारी पापवर्जिता। रूपवती प्रिया भर्त्तुः पतिवश्या भवेद् ध्रुवम् ॥३३॥
बन्ध्याऽपि जनयेत् पुत्रं रूपगुणसमन्वितम्। पत्युः स्नेहवती नित्यं[१५] भवेज्जन्मनि जन्मनि ॥३४॥
सङ्गमे योगगङ्गायाः स्रवन्त्या योगकूटतः[१६]। योगतीर्थं तया युक्तं योगिभिः सेवितं सदा ॥३५॥
स्नात्वा यस्तत्र वज्राख्यां भक्त्या पश्यति योगिनीम्। योगिनाञ्च फलं प्राप्य प्राप्नुयात्[१७] परमां गतिम् ॥३६॥
देवानां दुर्लभस्थाने तिष्ठति योगिनीगणैः। दर्शनाद्योगिनीदेव्या योगीश्वर स एव च ॥३७॥
मणिमत्याञ्च यो धीरः स्नात्वा भक्तियुतो मुने। दोलाद्रिञ्च समारुह्य पश्यति गरुडध्वजम् ॥३८॥
सर्वपापैर्विनिर्मुक्तः परिवारैः समन्वितः। सूर्यप्रतिमयानस्थो गच्छति वैष्णवं पुरम् ॥३९॥

---

जसले श्रावण पूर्णिमाका दिन विधिपूर्वक एकपटक भएमात्रै पनि यहाँ आएर स्नान गर्छ, त्यो व्यक्ति करोडौँ गाई दान गरेको फल प्राप्त गरी रुद्रलोक जान्छ। जसले त्यहाँ गएर हव्य, कव्य, जप, स्नान तथा दान गर्छ, त्यो व्यक्ति सात जुनीसम्म लागेको पापबाट मुक्त भएर शिवलोक जान्छ। मणिमती श्रेष्ठ नदी हुन्, वाग्वती सर्वपूज्या नदी हुन् र रुद्रधारा अत्यन्त पुण्यदायिनी नदी हुन्। यी तीनवटा नदीलाई त्रिगङ्गा भनिन्छ। मणिलिङ्गको शिर हुँदै पहाडको टाकुरामा जुन नदी खसिन्, त्यसैले देवताका लागि पनि पूजनीय यी नदी मणिमतीको नामले प्रसिद्ध भइन् ॥२६-२९॥

यी नदी सम्पूर्ण प्राणीहरूको इच्छा पूर्ण गरिदिने पवित्र नदीका रूपमा रहेकी छन्। देवताहरू विशेष गरी मोक्षार्थीहरूले उनको सेवा गर्छन्। प्रत्येक वर्ष जुन मानिसले फाल्गुन शुक्ल अष्टमी, सङ्क्रान्ति र अमावास्याका दिन त्यो तलाउमा स्नान गर्छ, त्यसले परमगति प्राप्त गर्छ। मणिमतीको जुनसुकै क्षेत्र पनि अत्यन्त पुण्यदायी छ, त्यहाँ विधिपूर्वक भक्तिले नुहाउने व्यक्ति शिवलोकमा गएर सम्मानित हुन पाउँछ ॥३०-३२॥

जुन नारीले मणिमतीमा नुहाउँछिन्, ती पापबाट मुक्त भएर राम्री र पतिकी प्यारी हुन्छिन् र तिनले पतिलाई आफ्नो वशमा राख्न सक्छिन्। बन्ध्या (बाँझी) नारीले पनि रूप र गुणले युक्त भएको छोरो पाउँछिन् र प्रत्येक जन्ममा तिनी सधैँ पतिकी प्यारी हुन्छिन्। योगकूटबाट बगेर आएकी योगगङ्गा मिसिएको क्षेत्रलाई योगतीर्थ भनिन्छ। त्यस तीर्थमा सधैँ योगीहरू बसिरहेका हुन्छन्। जसले त्यहाँ स्नान गरेर भक्तिपूर्वक वज्रयोगिनीको दर्शन गर्छ त्यो व्यक्ति योगीले प्राप्त गर्ने फल प्राप्त गरेर परमगतिमा पुग्छ। जसले योगिनी देवीको दर्शन गर्छ त्यो व्यक्ति योगीश्वर भएर देवताहरूले पनि प्राप्त गर्न नसक्ने ठाउँमा योगिनीहरूका साथ बस्न पाउँछ। जसले मणिमती अर्थात् मनोहरामा भक्तिपूर्वक स्नान गरेर दोलाचल पर्वतमा उक्लिएर भगवान् विष्णुको दर्शन गर्छ त्यो व्यक्ति सम्पूर्ण पापबाट मुक्त भएर सूर्यको जस्तो कान्ति भएको यानमा चढेर सपरिवार विष्णुलोक जान्छ ॥३३-३९॥

---

१०. स्नायते इति न.सं.पु.पाठः।
११. महत्पुण्या त्रिगङ्गा स्यादिमाश्च ता इति न.सं.पु.पाठः।
१२. प्रत्यब्दं स्नायते यस्तु तद्ध्रदे परमं लभेत् इति न.सं.पु.पाठः।
१३. स्नायते इति न.सं.पु.पाठः।
१४. स्नायते इति न.सं.पु.पाठः।
१५. स्नेहवती पतेर्नित्यम् इति न.सं.पु.पाठः।
१६. योगकूटात्स्रवन्ती या योयगङ्गासुसङ्गम् इति न.सं.पु.पाठः।
१७. स लभेत् इति न.सं.पु.पाठः।

मणिमत्याश्च कामिन्याः सङ्गमे तार्क्ष्यतीर्थके । स्नात्वेक्षति हरिं भक्त्या नागभयात् स मुच्यते ॥४०॥
तस्मान्मणिमती श्रेष्ठा सर्वनदीवरा च सा । वाग्वत्याः सङ्गमाद् भूयस्तस्याः किं वच्म्यहं फलम् ॥४१॥
वाग्वती रुद्रधारा च मणिमती नदी वरा । तासाञ्च सङ्गमे पुण्यं शिवतीर्थमुदाहृतम् ॥४२॥
कोटीश्वरो हि यत्रास्ते विश्वरूपो निरन्तरम् । दैत्येभ्यश्चैव भक्तेभ्यो वाञ्छितार्थप्रदायकः ॥४३॥
तत्र तत्र महालिङ्गं देव्या च प्रमथैः सह । विश्वरूपं स्वयं रुद्रः शङ्खासुरमदर्शयत् ॥४४॥
कश्यपश्च तपस्तेपे सुकठोरं मुनीश्वरः । कोटीश्वरं समभ्यर्च्य लोकानां सृष्ट्ये पुरा ॥४५॥
विष्णुस्तेपे पुरा तत्र लक्ष्मीकामनया शिवम्[१८] । लक्ष्मीः प्रलब्धा चाऽनेन[१९] रुद्रलब्धवरेण वै ॥४६॥
विभीषणस्तपस्तेपे रक्षो लङ्केप्सया ततः । धातुर्लब्धवरोऽद्याऽपि लङ्कायामासते चिरम् ॥४७॥
रुद्रह्रदं समासाद्य कोटीश्वरं प्रपूजयन्[२०] । ससर्ज प्राणिनो नूनं वराद्रुद्रस्य कश्यपः ॥४८॥
तद्ध्रदे च नरः स्नात्वा कोटीश्वरं प्रपूजयन् । सकृज्जन्मार्जितैः पापैः स मुक्तो नाऽत्र संशयः ॥४९॥
वाग्वत्या मणिमत्याश्च सङ्गमे देवसेविते । संस्नाति[२१] विधिना यस्तु सर्वकाममवाप्नुयात् ॥५०॥
सङ्गमे च तदभ्यासे स्रोतस्यूर्ध्वविनिःसृते । रुद्रधाराजलं नाम तीर्थं कोटिफलप्रदम् ॥५१॥
स्फटिकाभावलीस्वच्छमम्भोवुद्बुदपङ्क्तिमत् । रुद्रधारोदकं प्रेक्ष्य सर्वपापैः प्रमुच्यते ॥५२॥
तस्मिन् तीर्थवरे पुण्ये संस्नाति विधिना तु यः[२२] । विमानेनाऽर्कवर्णेन रुद्रलोकं स गच्छति ॥५३॥

---

मणिमती र कामिनी नदीको सङ्गममा रहेको तार्क्ष्यतीर्थमा गएर स्नान गरी जसले भक्तिपूर्वक हरिको दर्शन गर्छ, त्यो व्यक्ति नागको डरबाट मुक्त हुन्छ। त्यसैले मणिमती नदीलाई सबै नदीभन्दा उत्तम नदी मानिन्छ। वाग्वती नदीका साथ मणिमती र रुद्रमतीको सङ्गममा प्राप्त हुने फलका सम्बन्धमा त बताएरै सकिँदैन। वाग्वती, रुद्रमती र नदीश्रेष्ठ मणिमतीको पुण्य सङ्गमलाई शिवतीर्थ भनिएको छ। त्यहाँ कोटीश्वर नाम गरेका विश्वरूप भगवान् सधैँ बस्नुहुन्छ। उहाँले दैत्य र भक्तहरूलाई इच्छा अनुसारको फल दिनुहुन्छ। त्यही शिवतीर्थमा देवी र प्रमथगणका साथ भगवान् शिवको महालिङ्ग रहेको छ, जहाँ भगवान् शङ्करले शङ्खासुरलाई विश्वरूपको दर्शन दिनुभएको थियो ॥४०–४५॥

अघि कश्यप ऋषिले पनि संसारको सृष्टिका लागि कोटीश्वर भगवान्को पूजा गरेर कठिन तपस्या गरेका थिए। अघि भगवान् विष्णुले लक्ष्मीको चाहना राखेर शङ्करको तपस्या गर्नुभएको थियो। त्यसै तपस्याको फलले शिवजीबाट वर पाउनुभयो र लक्ष्मीलाई प्राप्त गर्नुभयो। विभीषणले लङ्काप्राप्तिको कामनाले तपस्या गरे। ब्रह्माजीबाट वर प्राप्त गरेर आज पनि विभीषण लङ्कामा नै बसेका छन् ॥४६–४७॥

कश्यप ऋषिले रुद्रदहमा पुगेर स्नान गरी कोटीश्वरको पूजा गरे। भगवान् शङ्करबाट वर पाएर उनले प्राणीहरूको सृष्टि गरे। त्यस रुद्रदहमा स्नान गरेर एकपटक मात्रै पनि कोटीश्वर महादेवको पूजा गर्ने मान्छे जन्मभर गरेका पापबाट मुक्त हुन्छ, यसमा शङ्का छैन। देवताहरूले पनि बसोवास गरेको वाग्वती र मणिमती नदीको सङ्गमस्थलमा जसले विधिपूर्वक स्नान गर्छ, त्यसले सबै कामना पूर्ण गर्न सक्छ। त्यसको नजिकै मास्तिर फोहरा निस्किएको सङ्गमस्थलमा करोडौँ फल दिने रुद्रधारा नाम गरेको तीर्थ छ। स्फटिक मणिको कान्तिजस्तै स्वच्छ पानीका फोकाले युक्त भएको रुद्रधारा तीर्थको दर्शन गरेर सम्पूर्ण पापबाट मानिस मुक्त हुन्छ। जसले विधिपूर्वक पवित्र उत्तम त्यस तीर्थमा स्नान गर्छ, त्यो व्यक्ति सूर्यको जस्तो वर्ण भएको विमानद्वारा रुद्रलोक जान्छ ॥४८–५३॥

---

१८. लक्ष्मीकामेन शाङ्करम् इति न.सं.पु.पाठः।
१९. तस्मात्प्रलब्धानेन इति न.सं.पु.पाठः।
२०. प्रपूजित इति न.सं.पु.पाठः।
२१. स्नायते इति न.सं.पु.पाठः।
२२. तस्मिन् तीर्थे वरे पुण्ये विधिना यस्तु स्नायते इति न.सं.पु.पाठः।

कृष्णाष्टम्यां चतुर्दश्यां सङ्क्रान्तौ कुहुपूर्णयोः[२३]। स्नात्वा कोटिगुणं प्राप्य पुण्ये रौद्रे[२४] महीयते ॥५४॥
नाभिकुण्डसमुद्भूतं यत्तेजः शङ्करस्य तु। जिह्वाग्राज्जलरूपेण पपात हिमगह्वरे ॥५५॥
वाग्वती शिवगङ्गेति सा वै ब्रह्मसरस्वती। देवैःसुरर्षिभिर्नित्यं सेविताश्च[२५] मुमुक्षुभिः ॥५६॥
वाग्वती सरितां श्रेष्ठा वाग्वती मोक्षदायिनी। गतिः सैव मुमुक्षूणां वाग्वती लोकपावनी ॥५७॥
तासाञ्च सङ्गमं तीर्थं शङ्खमूलमुदाहृतम्। कोटीनां तिसृणां सार्धकोट्या पूतञ्च यत् कलौ[२६] ॥५८॥
धन्यं पाशुपतं क्षेत्रं यत्र विराजतेऽनिशम्। शङ्खमूलं महातीर्थं सर्वतीर्थोत्तमोत्तमम् ॥५९॥
स एव मानवश्रेष्ठो यस्स्नाति तत्र सर्वदा[२७]। दुर्लभं मानुषं जन्म सम्प्राप्याऽसारसंसृतौ ॥६०॥
चपलञ्जीवनं लोके चपलं यौवनं मुहुः। मत्वेति स्नाति यस्तत्र स एव मुक्तिभाग्भवेत् ॥६१॥
फलं विद्धि च वाग्वत्या भागीरथ्याः शताधिकम्[२८]। शङ्खमूले च देवेड्ये त्रिमासेषु च पर्वसु ॥६२॥
स्नानमहं करिष्यामि शङ्खमूलेऽद्य चेतसा। इति कृत्वा बहिर्गन्तुर्गृहात्तस्य[२९] फलं शृणु ॥६३॥
पदे पदे फलं विद्याद्वाजपेयाश्वमेधयोः। गङ्गायां दशधा स्नानात्तत्फलं लभते हि सः ॥६४॥
सर्वजन्मार्जितैः पापैर्विमुक्तः स्नातकः शुचिः। महायानेन भूतेशं गच्छत्यन्ते परं पदम् ॥६५॥
दर्शनात्स्पर्शनात्स्नानात् लभेत क्रमशः फलम्[३०]। शङ्खमूले नरो धीमान् प्राप्नोति सुकृतं ध्रुवम् ॥६६॥

---

यस तीर्थमा कृष्णपक्षको अष्टमी तिथि, चतुर्दशी, सङ्क्रान्ति, पूर्णिमा र औंसीका दिन स्नान गर्ने व्यक्ति करोडौं गुणा फल प्राप्त गरेर रुद्रलोकमा जान्छ र सम्मानित हुन्छ। भगवान् शङ्करको नाभिकुण्डबाट उत्पन्न भएको जुन तेज थियो, त्यो जिब्राको अघिल्लो भागबाट जलको रूप लिएर हिमालयको गुफामा खस्यो। वाग्वती र शिवगङ्गा ब्रह्मसरस्वती नै हुन्। मोक्षको कामना गर्ने देवता र सुरर्षिहरू आएर सधैं यिनीहरूको तीरमा बस्छन्। वाग्वती सबै नदीमा श्रेष्ठ नदी हुन्, वाग्वती मोक्षदायिनी नदी हुन्। संसारलाई पवित्र तुल्याउने वाग्वती नदी मोक्षार्थीको गति हुन् ॥५४-५७॥

तीन करोड पचास लाख तीर्थको सङ्गम भएको शङ्खमूल तीर्थ कलियुगमा अत्यन्त पवित्र मानिन्छ। जहाँ सबै तीर्थभन्दा पनि उत्तम महातीर्थका रूपमा सधैं शङ्खमूल तीर्थ सुहाएको छ, त्यस्तो पाशुपत क्षेत्र धन्य छ। असार संसारमा दुर्लभ मानिसको जन्म पाएर जसले सधैं शङ्खमूल तीर्थमा स्नान गर्छ, त्यो मानव सबैभन्दा श्रेष्ठ मानिन्छ। जीवन अस्थिर छ र यौवन पनि अस्थिर छ, यस्तो सोचेर जसले शङ्खमूल तीर्थमा स्नान गर्छ, त्यसले मुक्ति पाउँछ ॥५८-६१॥

वाग्वतीमा स्नान गर्दा भागीरथीमा स्नान गरेको भन्दा सय गुणा बढी फल मिल्छ। तीन महिनासम्म पर्व-पर्वमा देवताहरूद्वारा पूजित शङ्खमूल तीर्थमा म स्नान गर्छु भनेर हृदयदेखि नै त्यसका लागि घरबाट जुन व्यक्ति बाहिर निस्कन्छ, त्यसको फल कस्तो हुन्छ, सुन्नुहोस्-त्यस व्यक्तिले पाइलैपिच्छे वाजपेय यज्ञ र अश्वमेध यज्ञ गरेको फल पाउँछ। गङ्गामा दश पटक स्नान गर्दा जुन फल प्राप्त हुन्छ, त्यो फल उसले पाउँछ। शङ्खमूलमा स्नान गरेर पवित्र भएका मनुष्यहरू जन्म-जन्मान्तरमा गरेका पापबाट मुक्त हुन्छन् र अन्त्यमा महायानद्वारा भगवान् शिवको परमपदलाई प्राप्त गर्छन्। शङ्खमूलको दर्शन, स्पर्शन र स्नान गर्नाले क्रम अनुसारको फल पाउँछ र त्यस बुद्धिमान् मानिसले उत्तम पुण्य प्राप्त गर्छ ॥६२-६६॥

---

२३. पूर्णिमाकुहौ इति न.सं.पु.पाठः।
२४. रुद्रलोके इति न.सं.पु.पाठः।
२५. प्रसेविता इति न.सं.पु.पाठः।
२६. तिस्रः कोट्योऽर्द्धकोटीनां पवित्रं परमं कलौ इति न.सं.पु.पाठः।
२७. यस्तत्र स्नायनेऽनिशम् इति न.सं.पु.पाठः।
२८. शतं गुण इति न.सं.पु.पाठः।
२९. बहिर्गन्तुं गृहात्तस्य इति न.सं.पु.पाठः।
३०. यथाक्रमात्फलं लभेत् इति न.सं.पु.पाठः।

शङ्खमूलमिति यो ब्रूयादसामर्थ्ये नरो यदि। स्नानस्यार्द्धफलं तत्र लभेत स न संशयः[३१] ॥६७॥
यः स्नाति[३२] विधिवद्भक्त्या शङ्खमूले शिवामृते। पुनर्भवं समुत्सृज्य प्राप्नोति परमं पदम् ॥६८॥
योऽर्चति भक्तितो लिङ्गं बालुकापांसुनिर्मितम्। शङ्खमूले मुदा स्नात्वा तस्य पुण्यफलं शृणु ॥६९॥
यावत्तद्वालुका संख्या तावच्छिवपुरे वसेत्। सर्वसुखमये भद्रे शुश्रूषन्[३३] शिवपादुकाम् ॥७०॥
यो ददाति च दानानि यत्किञ्चिद् वस्तु वा वसु। अन्यत्कोटिगुणं प्राप्य रुद्रलोके प्रमोदते ॥७१॥
श्राद्धं करोति यस्तत्र त्रिसप्तकुलमुद्धरेत्। तृप्ता यान्त्यप्यधःस्था ये मोदन्ते[३४] सुचिरं दिवि ॥७२॥
उमामहेश्वरं तीर्थं सर्वकामफलप्रदम्। यः संस्नाति धिया स्मृत्वा[३५] तस्य पुण्यफलं शृणु ॥७३॥
कोटिपापैविर्निर्मुक्त उमालोकं स गच्छति। वसेत्तत्र महासौख्ये[३६] सन्त्यज्य पुनरावृतिम् ॥७४॥
या गतिर्योगयुक्तस्य वाराणस्यां मृतस्य च। सा गतिः स्नानमात्रेण वाग्वत्यां हरिवासरे ॥७५॥
आभाकासितपक्षेषु रेवत्यां श्रवणे तथा[३७]। मैत्रे च द्वादशी युक्ता बुधेन हरिवासरी[३८] ॥७६॥
हरेः शयनकाले च प्रस्वप्नावर्त्तनोत्सवे। स्नात्वाऽर्चति शिवं भक्त्या शङ्खमूले शिवस्थले ॥७७॥
कोटिगुणं फलं लब्ध्वा शिवे लीनो भवेद् ध्रुवम्।

---

सामर्थ्य नभएको मानिसले पनि यदि शङ्खमूल शब्दको उच्चारण मात्र गर्छ भने त्यहाँ स्नान गरेको फलको आधा फल पाउँछ, यसमा शङ्का छैन। कल्याणकारी जल भएको शङ्खमूलमा जसले विधिपूर्वक भक्तिका साथ स्नान गर्छ, त्यसले फेरि जन्मनुपर्दैन, परमपद पाउँछ। जसले शङ्खमूलमा आनन्दसित स्नान गरेर बालुवाले शिवलिङ्ग तयार गरी भक्तिपूर्वक पूजा गर्छ, त्यसको पुण्यफल सुन्नुहोस्। त्यस लिङ्गमा जति बालुवाको कणको सङ्ख्या छ, त्यति नै वर्षसम्म कल्याणदायक शिवजीको पाउको सेवा गर्दै कैलाशमा बस्न पाउँछ। त्यस ठाउँमा जसले आफ्नो शक्ति अनुसार दान गर्छ वा केही धन दिन्छ भने त्यसले करोडौँ गुणा बढी प्राप्त गरेर रुद्रलोकमा ससम्मान बस्न पाउँछ। जसले त्यहाँ गएर श्राद्ध गर्छ, त्यसले एक्काइस कुलको उद्धार गर्छ। त्यहाँ गरिएको श्राद्धबाट अधोगतिमा परेका जति पितृहरू छन्, तिनीहरू तृप्त हुन्छन् र धेरै समयसम्म स्वर्गमा रमाउँछन् ॥६७-७२॥

सम्पूर्ण कामनालाई पूर्ण गर्ने उमामहेश्वर नाम गरेको तीर्थ छ, जसले हृदयदेखि नै त्यसलाई सम्झिएर स्नान गर्छ, त्यसको पुण्यफल सुन्नुहोस्। उमामहेश्वर तीर्थमा स्नान गर्ने मानिस करोडौँ पापबाट मुक्त भएर उमालोकमा जान्छ र पुनर्जन्मको झन्झटबाट मुक्त भएर अत्यन्त सुखका साथ त्यहाँ बस्न पाउँछ। जुन गति योगीको हुन्छ, जुन गति वाराणसीमा मरेका व्यक्तिको हुन्छ, वाग्वतीमा आइतबार स्नान गर्नाले मात्रै पनि त्यो गति प्राप्त हुन्छ ॥७३-७५॥

आश्विन, भाद्र र कार्तिक महिनाको शुक्लपक्षको द्वादशीका दिन बुधबार, अनुराधा, श्रवण तथा रेवती नक्षत्र पऱ्यो भने हरिवासर योग पर्छ। विष्णुको कोल्ट्ये फेर्ने समयमा शङ्खमूलमा शिवजीको मन्दिरमा गएर भक्तिपूर्वक स्नान गरेर पूजा गर्ने व्यक्ति करोडौँ गुणा फल प्राप्त गरी अवश्य शिवमा लीन हुन्छ ॥७८-७७½॥

---

३१. स लभेन्नात्र संशय इति न.सं.पु.पाठः।
३२. स्नायते इति न.सं.पु.पाठः।
३३. सेवयन् इति न.सं.पु.पाठः।
३४. मोदन्ति इति न.सं.पु.पाठः।
३५. यः स्नायते धिया स्तृत्य इति न.सं.पु.पाठः।
३६. महत्सौख्ये इति न.सं.पु.पाठः।
३७. आभाकासितपक्षे च मैत्रश्रवणरेवती इति न.सं.पु.पाठः।
३८. द्वादशी बुधवारेण संयुक्ता हरिवासरी इति न.सं.पु.पाठः।

आर्तो भीतश्च कुष्ठी वा व्याधितोऽव्याधितोऽपि वा ॥७८॥
ग्रहापमृत्युसङ्ग्रस्तः[३९] चाऽपस्माररुजाऽन्वितः। शङ्खमूले परे स्नाति विधिवद्विबुधश्च यः[४०] ॥७९॥
तस्य शान्तिर्भवेन्नित्यमुमामहेश्वरस्मृतेः। ब्रह्मा तेपे यथापूर्वं कोटीश्वरं प्रपूजयन् ॥८०॥
तत्र देवाः सगन्धर्वा वाञ्छितार्थाय तेपिरे। व्रजनाभोऽसुरश्रेष्ठस्तेपे तत्र भृशं पुनः ॥८१॥
नारदवचनात्सम्यक् रुद्रधाराजलाप्लुतः। तेनैव दमितः शक्रो देवासुरे सुसङ्गरे ॥८२॥
आददौ वसुजातानि चाऽवलुण्ठ्यामरावतीम्। तद्वसूनि च सर्वाणि समादाय च सर्वशः ॥८३॥
आययौ सुप्रभाराज्यं यत्रास्ते चन्दनेश्वरः। तस्मात्तीर्थवरं पुण्यं देवलोकैः प्रसेवितम् ॥८४॥
कोटीश्वरो हि यत्रास्ते त्रिगङ्गासङ्गमे यतः। शङ्खमूलसमं तीर्थं नास्ति नास्ति रसातले ॥८५॥
तस्मात्प्रलभ्यते लोकैर्भुक्तिमुक्तिफलोत्तमम्। शतगङ्गासमं ज्ञेयं शङ्खमूलं महाफलम् ॥८६॥
चतुर्वर्गफलं तत्र स्नातकानां न संशयः। ये शृण्वन्ति त्रिगङ्गायाः सङ्गमस्य सुभक्तितः ॥८७॥
शङ्खमूलस्य माहात्म्यं तेषां पुण्यफलं शृणु। आजन्मार्जितपापैस्ते विनिर्मुक्ता न संशयः ॥८८॥
तत्र स्नानात्फलं धीराः श्रुत्वा माहात्म्यमुत्तमम्। देहान्तेऽद्भुतयानेन रुद्रलोकप्रयायिनः[४१] ॥८९॥
या काचिदबला चाऽपि शृणोति भक्तितो मुदा।
धन्यं यशः सा सुभगञ्च पुत्रं पतिप्रियाऽसौ प्रलभेत[४२] सौख्यम्।
सौन्दर्यरूपं सुतनुं हि लोके सुदुर्लभं लोकसुवाञ्छितं वै ॥९०॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे शङ्खमूलमाहात्म्यं नाम अष्टाशीतितमोऽध्यायः ॥८८॥

---

रोगी, डराएका, कुष्ठरोगले ग्रस्त, अन्य कुनै रोग लागेका वा रोग नलागेका, ग्रह अनुकूल नभएका अथवा अकाल मृत्युले युक्त भएका मानिसहरूले बारम्बार शङ्खमूलमा स्नान गर्नुपर्छ र उमा–महेश्वरको ध्यान गर्नुपर्छ। यसो गर्नाले त्यसका सम्पूर्ण बाधाहरू शान्त हुन्छन् ॥७८–७९॥

ब्रह्माजीले पहिले कोटेश्वरको पूजा गरेर जसरी तपस्या गर्नुभएको थियो, त्यसरी नै देवता तथा गन्धर्वले आफ्नो इच्छा पूर्ण गर्नका लागि त्यहाँ तपस्या गरे। फेरि त्यस ठाउँमा नारदजीको निर्देशन अनुसार रुद्रधाराको जलमा स्नान गरेर व्रजनाभ नाम गरेको राक्षसले विधिपूर्वक तपस्या गर्‍यो। त्यसै तपस्याको प्रभावले त्यस राक्षसले देवता र राक्षसको लडाईंमा इन्द्रलाई दमन गर्‍यो, अमरावती लुटेर सम्पूर्ण सम्पत्ति लियो। त्यसपछि त्यो राक्षस इन्द्रको सम्पूर्ण सम्पत्ति लिएर जहाँ भगवान् चन्दनेश्वर रहनुभएको छ, त्यस सुप्रभा राज्यमा आएको थियो। देवताहरूको बसोवास भएको त्यो स्थल पवित्र तीर्थ हो। त्यहाँ तीनवटा गङ्गाको सङ्गममा कोटीश्वर भगवान् रहनुभएको छ। शङ्खमूलजस्तो तीर्थ पृथ्वीतलमा छैन, छैन। त्यसै तीर्थबाट मानिसहरूले भुक्ति र मुक्तिसँग सम्बद्ध उत्तम फल पाउँछन् ॥८०–८५॥

सय गङ्गा बराबर शङ्खमूलको पुण्यफल छ भनेर जान्नुहोस्। त्यस तीर्थमा स्नान गर्ने व्यक्तिहरूले धर्म, अर्थ, काम र मोक्ष नामक चार किसिमका फल पाउँछन्, यसमा शङ्का छैन। जसले तीन गङ्गाको सङ्गमस्थल भएको शङ्खमूलको माहात्म्य भक्तिपूर्वक सुन्छन्, त्यसको पुण्यफल सुन्नुहोस्। ती मानिसहरू जन्मभरि गरेका पापबाट मुक्त हुन्छन्, शङ्खमूलमा स्नान गर्दा जुन फल प्राप्त हुन्छ, तिनको उत्तम माहात्म्य सुन्दा त्यही फल प्राप्त हुन्छ, यसमा शङ्का छैन। स्त्रीजाति वा कोहीले पनि यो माहात्म्य भक्तिपूर्वक आनन्दसित सुन्छन् भने तिनीहरू मरेपछि अद्‌भुत यानमा बसेर रुद्रलोक जान्छन् ॥८६–८९½॥

पतिव्रता स्त्रीले सुन्दछिन् भने यशस्वी र भाग्यशाली पुत्र पाउँछिन्, पतिकी प्यारी हुन्छिन्, सुख पाउँछिन् र सौन्दर्य, रूप, राम्रो शरीर, जो कोहीले प्राप्त गर्न नसक्ने इच्छा लागेको फल पाउँछिन् ॥९०॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनुदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा शङ्खमूलको माहात्म्यनामक अठासिऔं अध्याय पूरा भयो।

---

३९. ग्रहभूतोऽपमृत्युर्वा इति न.सं.पु.पाठः।
४०. स्नात्वा विधिवद् विबुधोऽनिशम्, इति न.सं.पु.पाठः।
४०. रुद्रलोकं गताः खलु इति न.सं.पु.पाठः।
४१. प्रलभेद्धि इति न.सं.पु.पाठः।

# ऊननवतितमोऽध्यायः

## वाग्वतीमहिमा तीर्थयात्राविधिश्च

अगस्त्य उवाच

अत्यद्भुतं महत्पुण्यं वाग्वत्यां स्नानतोऽनिशम्। लब्धं लोकैश्च तातेति त्वत्प्रसाच्छ्रुतं मया ॥१॥
क्रमञ्च श्रोतुमिच्छामि स्नातकानां तथा विधिम्। स्नानं दानं पुनर्देयं तत्सर्वं मे वद प्रभो ॥२॥

स्कन्द उवाच।

शृणु सर्वं प्रवक्ष्यामि निष्पद्यते फलं यतः। स्नातकानाञ्च तीर्थेषु साधारणक्रमो मतः[१] ॥३॥
धौतपादकरः सायं विधाय दन्तधावनम्[२]। कृत्वा सङ्कल्पं तीर्थेऽहं[३] गमिष्ये स्नातुमित्यतः ॥४॥
प्रातः कृत्यं समुत्तीर्य यथाविभवविस्तरैः। प्रसन्नमानसो भूत्वा तीर्थस्नानोत्सुको भवेत् ॥५॥
उपस्करं समादाय गृहात्प्रनिःसृतो बहिः। स्नातुं गच्छामि वाग्वत्यां कृत्वेति मनसा व्रजेत् ॥६॥
आर्यातीर्थे जलाप्लावं कर्त्तुं गच्छामि सांप्रतम्। वागुक्त्या मनसाऽऽचिन्त्य गृहाद्बहिः पथि व्रजेत् ॥७॥
शङ्खमूले महातीर्थे स्नानं कर्त्तुं व्रजाम्यहम्। सञ्चिन्त्य मनसा वाचा यमी गृहात्पथि व्रजेत् ॥८॥
तस्मिन्तीर्थवरे स्नानं कर्तुं गच्छाम्यहं ध्रुवम्। भक्त्या पथि व्रजेत् गेहात्साधारणक्रमो[४] मुने ॥९॥
स्नातकश्चैव तत्तीर्थे भक्तियुक्तो हि संयतः। पदे पदेऽश्वमेधानां फलं लभेत सर्वदा[५] ॥१०॥
वाजपेयाश्वमेधानां फलं विन्देत्पदे पदे। त्रिगङ्गासङ्गमे पुण्ये स्नातकः सर्वपर्वसु[६] ॥११॥

---

## अध्याय - ८९

### वाग्वतीको महिमा र तीर्थयात्रा विधि

अगस्त्य मुनिले भन्नुभयो – बारम्बार वाग्वतीमा स्नान गरेर मानिसहरूले धेरै पुण्य पाए भन्ने कुरा हजुरको अनुग्रहबाट मैले सुनेँ। हे प्रभु ! अब वाग्वतीमा स्नान गर्ने व्यक्तिले कुने क्रम र कुन विधिबाट स्नान गर्नुपर्छ, कुन विधिबाट दान गर्नुपर्छ, त्यो सबै कुरा बताउनुहोस्, म सुन्न चाहन्छु ॥१-२॥

कार्तिक स्वामीले भन्नुभयो – स्नान गर्ने व्यक्तिहरूका लागि जुन फल प्राप्त भएको थियो, त्यो सबै म बताउँछु, तीर्थमा स्नान गर्ने क्रम भने साधारण नै छ अर्थात् अरू तीर्थमा जसरी गरिन्छ, त्यसरी त्यहाँ पनि गर्नुपर्छ। सायङ्कालमा हातखुट्टा धोएर दाँत माझेर जितेन्द्रिय भई म भोलि तीर्थ स्नान गर्न जान्छु भन्ने सङ्कल्प गर्नुपर्छ। भोलिपल्ट बिहान घरमा गर्नुपर्ने सबै काम सकेर प्रसन्न चित्त भई आफ्नो गच्छे अनुसार तीर्थस्नान गर्नका लागि उत्सुक हुनुपर्छ। स्नान गर्न आवश्यक सम्पूर्ण सामग्रीहरू साथमा लिएर म वाग्वतीमा स्नान गर्न जान्छु भन्ने मनमा विचार गरी हिँड्नुपर्छ ॥३-६॥

आर्यातीर्थमा स्नान गर्न जान्छु भन्ने मनले चिन्तन गरी वचनले समेत अभिव्यक्ति दिएर घरबाट बाटो लाग्नुपर्छ। शङ्खमूल तीर्थमा स्नान गर्न जान्छु भन्ने मनले अठोट गरेर बोलीले पनि त्यसै भनेर संयमी भई घरबाट प्रस्थान गर्नुपर्छ। म त्यो उत्तम तीर्थमा स्नान गर्न जान्छु भन्ने मनमा लिएर भक्तिपूर्वक बाटो लाग्नुपर्छ। यो अरू तीर्थमा जस्तै गर्ने यस तीर्थको पनि विधि हो। जितेन्द्रिय भएर वाग्वती तीर्थमा भक्तिपूर्वक स्नान गर्ने व्यक्तिले पाइलैपिच्छे अश्वमेध यज्ञ गरेको फल पाउँछ। तीन गङ्गाको सङ्गममा सम्पूर्ण पर्वमा स्नान गर्ने व्यक्तिले पाइलैपिच्छे वाजपेय यज्ञ र अश्वमेध यज्ञ गरेको फल पाउँछ भन्ने कुरा बुझ्नुपर्छ ॥७-११॥

---

१. साधारणक्रमं मतम् इति न.सं.पु.पाठः।
२. सायं प्रक्ष्याल्य पादाङ्घ्री प्रसुप्तो दन्तधावन इति न.सं.पु.पाठः।
३. सङ्कल्प्य संयतस्तीर्थे इति न.सं.पु.पाठः।
४. गेहात्साधारणमतम् इति न.सं.पु.पाठः।
५. वाग्वत्यां सफलं लभेत् इति न.सं.पु.पाठः।
६. सर्वकर्मसु इति न.सं.पु.पाठः।

द्विगुणं तत्फलं विन्देत् स्पर्शनाच्च[७] पदे पदे। आर्यातीर्थे महत्पुण्यं लिङ्गं प्रेक्ष्य चतुर्गुणम् ॥१२॥
पितामहमहातीर्थे लभेत त्रिगुणं तथा[८]। वाग्वतीसम्भवे पुण्ये चतुर्गुणफलं पुनः ॥१३॥
एवमेव हि तीर्थेषु साधारणक्रमो मुने। दूराद्धिमाद्रिजास्वार्य[९] ! स्नातो विन्देत् महत्फलम् ॥१४॥
अश्वयाने तदर्द्धं स्यात् गोयाने तदर्धकम्। नरयाने चतुर्थांशं प्राप्नुयात् तीर्थजं फलम्[१०] ॥१५॥
तथोपानत्प्रयाणस्य भागं गृह्णाति तत्पशुः। षडङ्गञ्च फलं स्नातुः सर्वतीर्थेष्वयं विधिः ॥१६॥
समर्थो यानगोऽज्ञश्च तीर्थस्नायी सुनिष्फलः। कायक्लेशान्महत्पुण्यं तीर्थयात्री च प्राप्नुयात्[११] ॥१७॥
प्रपश्य दूरतस्तीर्थं प्रणमेद्दण्डवद्भुवि। भक्तियुक्तहृदा भाव्यं नश्यति दुष्कृतं समम्[१२] ॥१८॥
स्मरणात्पूयते गात्रं तीर्थानां कुम्भसम्भव। नित्यं कृतोद्भवैः पापैः मुक्तिर्भवति तत्स्मृतेः[१३] ॥१९॥
तीर्थप्रदर्शनात्सद्यः संसारतः प्रमुच्यते। दृष्टिदोषोद्भवैः पापैः साधारणक्रमो मुने ॥२०॥
ॐ नमस्ते देवि वाग्वत्यै सर्वदुष्कृतनाशिनि। अद्य मे धूलितं पापं त्वद्दर्शनाच्चिरार्जितम् ॥२१॥
संस्पर्शनाच्च तीर्थानां विमुच्यते स दुष्कृतैः। अङ्गदोषोद्भवैर्गाढैरमेध्यस्पर्शजैरपि ॥२२॥
तीर्थेषु स्नानतोऽगस्त्य ! जन्तुः पापैर्विमुच्यते। सुखदुःखोद्भवैः सद्यः शपथजैरपि ध्रुवम् ॥२३॥

---

पापी व्यक्तिले पनि आर्यातीर्थमा स्नान गऱ्यो भने दुई गुणा फल पाउँछ। त्यसपछि त्यहाँ रहेको शिवलिङ्गको दर्शन गऱ्यो भने त्यसको चार गुणा बढी फल उपलब्ध हुन्छ। पितामह तीर्थमा स्नान गऱ्यो भने त्यसको तीन गुणा बढी फल पाउँछ, वाग्वती उत्पत्ति भएको पवित्र क्षेत्रमा स्नान गऱ्यो भने त्यसको चार गुणा बढी फल पाउँछ ॥१२–१३॥

हे अगस्त्य मुनि ! सबै तीर्थहरूमा गर्ने स्नानको क्रम उस्तै हो, तर हिमालय पर्वतबाट उत्पन्न तीर्थमा स्नान गर्नेले बढी फल पाउँछ। घोडामा चढेर यात्रा गर्न जाने व्यक्तिले त्यसको आधा फल पाउँछ, गोरुमा चढेर तीर्थ यात्रा गर्न जाने व्यक्तिले त्यसको पनि आधा फल पाउँछ, मानिसबाट बोकिएर तीर्थ गर्न जाने मानिसले एकचौथाइ मात्र तीर्थस्नान गरेको फल पाउँछ। जुत्ता लगाएर तीर्थयात्रा गर्ने व्यक्तिले प्राप्त गरेको पुण्यको फल पशुले ग्रहण गर्छ। सबै तीर्थमा स्नान गर्ने व्यक्तिले प्राप्त गर्ने छवटै अङ्ग भएका पुण्यका फलहरू र तिनको विधि यही नै हो ॥१४–१६॥

सवारीमा चढेर जाने मूर्ख मानिस हो। त्यसले गरेको तीर्थको स्नान निष्फल हुन्छ। शरीरलाई कष्ट दिएर गरेको तीर्थस्नान बढी फलदायी हुन्छ, सामर्थ्य छैन भने त सवारीमा चढेर गए पनि सो फल पाउँछ। सामर्थ्य छैन भने टाढैबाट सबै किसिमबाट सम्पूर्ण पाप नाश गर्ने तीर्थलाई हेरेर भक्तिभावले परिपूर्ण भई हृदयले चिन्तन गर्दै पृथ्वीमा लम्पसार परेर दण्डवत् प्रणाम गरे पनि हुन्छ ॥१७–१८॥

हे अगस्त्य मुनि ! दिनदिनै जम्मा भएको पापले भरिएका व्यक्तिहरूले तीर्थलाई सम्झिए भने मात्रै पनि शरीर शुद्ध हुन्छ। तीर्थलाई एकपटक मात्र दर्शन गरिन्छ भने पनि दृष्टिदोषबाट उत्पन्न भएका संसारका पापहरूबाट मानिस तुरुन्त मुक्त हुन्छ। हे अगस्त्य मुनि ! यो सबै तीर्थको नियम हो। सबै पापलाई नाश गर्ने हे वाग्वती देवी ! हजुरको दर्शन गर्न पाएर धेरै समयदेखि लागेको मेरो पाप आज धूलो भयो। तीर्थलाई छुनाले मात्रै पनि अङ्गदोष र अस्पृश्य व्यक्ति वा जातिको स्पर्शबाट उत्पन्न भएका पापहरूबाट मुक्त हुन्छ। हे अगस्त्य मुनि ! तीर्थहरूमा तीर्थजल पान गर्नाले अथवा तीर्थहरूमा स्नान गर्नाले प्राणी सुख, दुःखबाट उत्पन्न हुने पाप र प्रतिज्ञा गरेका कार्य पूर्ण गर्न नसक्दा पैदा हुने पापबाट अवश्य मुक्त हुन्छ ॥१९–२३॥

---

७. विद्यात्पातको हि इति न.सं.पु.पाठः।
८. त्रिगुणं तल्लभेत्तथा इति न.सं.पु.पाठः।
९. दूराद्धिमाद्रिजेष्वार्य ! इति न.सं.पु.पाठः।
१०. तीर्थस्नानफलं लभेत् इति न.सं.पु.पाठः।
११. असामर्थ्यं विना लभेत् इति न.सं.पु.पाठः।
१२. भक्तियुक्तो हृदा भाव्यं सर्वं दुष्कृतनाशकम् इति न.सं.पु.पाठः।
१३. प्रधानानां विशेषत इति न.सं.पु.पाठः।

स्नानावगाहनान्मर्त्यो मुच्यते किल्विषैः क्षणात्। मानसदोषजैश्चाऽपि स्नानाभिपानतोऽनिशम् ॥२४॥
तीर्थस्य गौरवं नत्वा[१४] बद्धशीर्षो यथाविधि। कुशोदकं समादाय वाक्यात् सङ्कल्पयेद् बुधः[१५] ॥२५॥
तिङ्सुबन्तयुतं वाक्यं चात्मने यदि युज्यते। मध्ये कामञ्च हेतुञ्च तिथ्यादिवाक्यमुच्यते ॥२६॥
मासं पक्षं तथा वारं तिथिं नक्षत्रमेव च। सङ्कल्पे नाम गोत्रञ्च समुच्चार्य तथैव च ॥२७॥
अद्यामुष्मिन् यथा मासे यथापक्षे दिने तिथौ। नक्षत्रे च यथायोगे ह्यस्मिन्तीर्थे ततः परम् ॥२८॥
वदेत्स्नानमहं कुर्यां[१६] साधारणक्रमो मुने। कामलिप्सोश्च सङ्कल्पं वक्ष्यामि शृणु तत्पुनः ॥२९॥
अद्यादिभिः पदं धृत्वाऽमुकगोत्रोऽहमेव च[१७]। शर्मा वर्मा सुरो दासः स्वनाम्ना युज्यते पदम् ॥३०॥
मुक्तिनिर्वाणकामेन हृत्कामेनाथवा पुनः। अस्मिन्तीर्थे मुदा स्नानं कुर्वे कुशोदकं त्यजेत् ॥३१॥
सङ्कल्पेन विना कर्म स्नानं वा नार्चनं मखम्। यत्करोति तपो धीरस्तत्सर्वं निष्फलं भवेत् ॥३२॥
तस्मात्पूर्वं प्रयत्नेन सङ्कल्पः क्रियतै बुधैः। यस्मात्प्राप्नोति तत्सर्वं स्नानादिसम्भवं फलम् ॥३३॥
इष्टेशप्रीतिकामस्तु[१८] वाक्यं कुर्याद्विचक्षणः। स्नाने जपे च होमे च कोटिकोटिगुणं फलम् ॥३४॥
न नदीषु नदीं ब्रूयात्पर्वतेषु च पर्वतम्। नान्यत्प्रशंसेत्तत्रस्थस्तीर्थेष्वायतनेषु च ॥३५॥
भक्त्या च प्रपठेत्[१९] स्तोत्रमावाहनमयं विधिः। मन्त्री मन्त्रेण गङ्गाञ्च साधको वैदिकेन वा ॥३६॥

---

स्नान गर्नाले र पौडिनाले मानिस तुरुन्त पापबाट मुक्त हुन्छ। स्नान र आचमन गर्नाले मानसदोषबाट पैदा भएका पापबाट पनि मानिस तुरुन्त मुक्त हुन्छ। महिमाशाली तीर्थलाई अञ्जुलि बाँधेर विधिपूर्वक नमस्कार गरी कुश र जल लिएर वाक्य उच्चारण गर्दै सङ्कल्प गर्नुपर्छ। तिङन्त, सुबन्त आदि पदले युक्त भएका वाक्यहरू आफ्ना निमित्त उपयोग गर्नुपर्छ। बीचमा आफ्नो अभिलाषाको उत्पत्तिका कारण भएका तिथि, बार आदिले युक्त भएका वाक्यहरूको प्रयोग गर्नुपर्छ। अद्य आदि पदका साथ मास, पक्ष, बार, तिथि, नक्षत्र, योग, आफ्नो गोत्र, नाम आदिले युक्त भएको वाक्य सङ्कल्पमा उच्चारण गर्नुपर्छ ॥२४–२७॥

आज यस महिनामा, यस पक्षमा, यस दिनमा, यस तिथिमा, यस नक्षत्रमा र यस योगमा, यस तीर्थमा म स्नान गर्छु भनेर भन्नुपर्छ। यो सामान्य तीर्थस्नानको नियम हो। कुनै कामना गरेर तीर्थस्नान गरिने सङ्कल्पबारे म बताउँछु, सुन्नुहोस् ॥२८–२९॥

अद्य आदि पद ग्रहण गर्दै अमुकगोत्रको शर्मा, वर्मा, सुर, दास आदि मध्येको म भनेर आफ्नो नामको पद प्रयोग गर्नुपर्छ। मुक्तिको कामना लिएर होस् अथवा अरू कुनै मनमा इच्छा राखेर होस्, यस तीर्थमा स्नान गर्छु भनी कुश र जल छोड्नुपर्छ। सङ्कल्प नगरीकन कुनै कर्म, स्नान, पूजा वा दान गर्नुहुँदैन। विना सङ्कल्प जे–जस्तो तपस्या गरिन्छ, त्यो सबै निष्फल हुन्छ। तसर्थ विद्वान्हरूले प्रयास गरेर पहिले सङ्कल्प नै गर्दछन्। त्यसैले गर्दा उनीहरूले स्नानादिबाट उत्पन्न भएको सम्पूर्ण फल पाउँछन् ॥३०–३३॥

आफ्ना इष्ट देवतालाई प्रसन्न तुल्याउन विद्वान् पुरुषले सङ्कल्पवाक्य पढ्नुपर्छ। यसरी सङ्कल्प गरेर गरिएको स्नान, जप र होमबाट करोडौँ करोड गुणा फल प्राप्त हुन्छ। नदीहरूलाई नदी र पर्वतलाई पर्वत भन्नुहुँदैन। त्यहाँका तीर्थ र मन्दिरहरूमा अरूको प्रशंसा गर्नुहुँदैन। मन्त्र जान्ने व्यक्तिले वैदिक ऋचाहरूले वा मन्त्रले भक्तिपूर्वक स्तोत्र पाठ गर्नुपर्छ र गङ्गाको आवाहन गर्नुपर्छ, यो तीर्थदर्शनको विधि हो ॥३४–३६॥

---

१४. प्रणम्य गौरवं तीर्थम् इति न.सं.पु.पाठः।
१५. सङ्कल्पते हि वाक्यत इति न.सं.पु.पाठः।
१६. सर्वम् इति न.सं.पु.पाठः।
१७. ग्राह्यामुकगोत्रोऽहमेव च इति न.सं.पु.पाठः।
१८. इष्टेशप्रीतिकामेन इति न.सं.पु.पाठः।
१९. प्रपठ्यते इति न.सं.पु.पाठः।

ॐ वरुणाय च देवाय चाऽम्भसां पतये नमः। रुद्रात्मने जलेशाय रसानां पतये नमः ॥३७॥
पवित्रितञ्जगत्सर्वं जगदुद्धरणाय च। येन प्रतिष्ठितं तस्मै जीवनाय नमो नमः ॥३८॥
अदोषा पूतसलिला हरमूर्तिरियं स्मृता। स्नातास्तस्यां विमुच्यन्ते जलमूर्ते ! नमोऽस्तु ते ॥३९॥
एवं स्तुत्वाशु तीर्थाय प्रगृहीत्वोपहारकम्। दद्यात्तीर्थाय भक्त्या तच्चितनीयन्ततः परम् ॥४०॥
सरस्वतीं महादेवीं तीर्थे स्वान्तेन भावयेत्। नाभिकुण्डसमुद्भूतां शम्भोर्वक्त्राद्विनिस्सृताम् ॥४१॥
मुक्तास्फटिकचूर्णाभां बालुस्खलितवाहिनीम्। वाग्वतीं ताण्डवीभूतां सर्वलोकैः प्रसेविताम् ॥४२॥
शुद्धस्फटिकसङ्काशां त्रिनेत्राञ्चारुहासिनीम्। चतुर्भुजां महेशानीं मकरकुण्डलाञ्चिताम् ॥४३॥
सम्पूर्णेन्दुमुखीं देवीं सर्वाभरणभूषिताम्। दधानां सर्वहस्तेषु पाशाङ्कुशवराभयम् ॥४४॥
एवं सञ्चिन्त्य तीर्थे ताञ्चानाभिजलमाविशेत्। मौनी द्विवस्त्रधृक् स्नायाद्विधिवत्सुविचक्षणः ॥४५॥
अन्येभ्यः सङ्गमेभ्यश्च[२०] शङ्खमूले शतं गुणम्। फलं स्नात्वाऽऽप्नुयात्[२१] धीमान्तस्माच्छ्रेष्ठं मृगोदकम्॥४६॥
शतगङ्गासमं तीर्थं त्रिगङ्गं हरिवासरे। तस्माद्दशगुणं ज्ञेयं चार्यातीर्थं महत्तरम् ॥४७॥
वाग्वत्याः सम्भवे तीर्थे सहस्रञ्च गुणं फलम्। सङ्गमे चाप्युमा[२२]तीर्थे कोटिकोटिगुणं फलम् ॥४८॥
प्राप्नुयात् सत्फलं[२३] स्नानाद्वाजपेयाश्वमेधयोः। शतं सहस्रकं कोटि त्रिषु तीर्थेषु तत्क्रमात् ॥४९॥
सर्वपर्वसु यत्नेन स्नाति यो[२४] विधिवद् बुधः। प्रोक्तं फलं प्राप्नुयात् स[२५] यथानुसारतोऽन्यतः ॥५०॥

---

जलका स्वामी वरुण देवतालाई नमस्कार छ। रुद्र नै आत्मा भएका जल र रसका अधिपतिलाई नमस्कार छ। संसारको उद्धारका लागि जसले संसारलाई नै पवित्र तुल्याएको छ, जसमाथि विश्व अडेको छ, त्यस्तो जलस्वरूपलाई बारम्बार नमस्कार छ। पवित्र जलहरू कहिल्यै दूषित हुँदैनन् किनभने जल भनेको शिवजीको स्वरूप हो भन्ने प्रसिद्धि छ। जसले जलमा स्नान गर्छ, ती व्यक्तिहरू मुक्त हुन्छन्। हे जलमूर्ते ! हजुरलाई नमस्कार छ ॥३७–३९॥

यसरी तत्कालै स्तुति गरेर तीर्थलाई फूल, अक्षता, नैवेद्य, भेटी आदि पूजासामग्रीहरू भक्तिपूर्वक समर्पण गरेर ध्यान गर्नुपर्छ। तीर्थमा नाभिकुण्डबाट पैदा भएर भगवान् शङ्करको मुखबाट निस्किएकी महादेवी सरस्वतीलाई हृदयले चिन्तन गर्नुपर्छ। मुक्ता र स्फटिकको धूलोजस्तो कान्ति भएकी, बालुवा खसाल्दै बग्ने र सम्पूर्ण दुनियाँले सेवा गरिएकी तथा ताण्डव नृत्य गर्दै हिँड्ने वाग्वतीलाई ध्यान गर्नुपर्छ ॥४०–४२॥

तीन आँखा भएकी, मुसुक्क हाँस्ने, सफा स्फटिकजस्ती, माछाको आकार भएका कुण्डल लगाएकी, चार हात भएकी महेश्वरीको ध्यान गर्नुपर्छ। सबै अलङ्कार पहिरिएकी, पूर्णचन्द्रको जस्तो मुख भएकी, आफ्नो हातमा पाश, अङ्कुश, वर तथा अभयमुद्रा धारण गरेकी देवीको ध्यान गर्नुपर्छ ॥४३–४४॥

यस विधिले तीर्थमा वाग्वतीको ध्यान गरेर नाभिसम्म पानी आउने गरी जलमा प्रवेश गर्नुपर्छ। दुईवटा वस्त्र धारण गरेर मौन भई विज्ञ व्यक्तिले विधिपूर्वक स्नान गर्नुपर्छ। अरू सङ्गममा भन्दा शङ्खमूलमा स्नान गर्ने व्यक्तिले सयौं गुणा बढी फल पाउँछ। शङ्खमूल तीर्थभन्दा पनि मृगोदक नाम गरेको तीर्थ अझ श्रेष्ठ छ। आइतबारको दिन त्रिगङ्गा तीर्थ शतगङ्गा बराबर हुन्छ। त्यसभन्दा पनि आर्यातीर्थ दशगुणा बढी महत्त्वपूर्ण छ ॥४५–४७॥

वाग्वतीको उत्पत्तिस्थान अर्थात् वाग्द्वारतीर्थमा स्नान गर्नाले हजारौं गुणा बढी फल प्राप्त हुन्छ। उमातीर्थको सङ्गममा स्नान गर्दा करोडौं करोड गुणा फल प्राप्त हुन्छ। यी तीनै तीर्थमा क्रमैले स्नान गर्ने व्यक्तिले सय गुणा, हजार गुणा र करोड गुणा फलको साथै वाजपेय र अश्वमेध यज्ञ गरेको फल पाउँछ। विज्ञ व्यक्तिले सबै पर्वहरूमा यत्नका साथ विधिपूर्वक स्नान गऱ्यो भने अरू ठाउँमा गरेको स्नानभन्दा यस ठाउँमा गरेको स्नानबाट माथि भनिए अनुसारका फलहरू क्रमैले प्राप्त गर्छ ॥४८–५०॥

---

२०. अन्येषां सङ्गमानाञ्च, इति न.सं.पु.पाठः।
२१. स्नाता लभेत्फलम् इति न.सं.पु.पाठः।
२२. समुमा इति न.सं.पु.पाठः।
२३. स्नातो फलं लभेत् इति न.सं.पु.पाठः।
२४. स्नायते इति न.सं.पु.पाठः।
२५. लभेत्तावद् यथानुसारतोऽन्यतः, इति न.सं.पु.पाठः।

महापातकिनः स्नानान्मुच्यन्ते पातकैः क्षुणात्[२६] । अगम्यागमनोद्भूतैः परदाराविमर्दनैः ॥५१॥
स्त्रियोऽपि ता विमुच्यन्ते त्रिगङ्गादिनिमज्जनात्[२७] । मुनिहत्योद्भवैः पापैः पतिदुर्वाच्यसम्भवैः ॥५२॥
रजोवतीस्पृशादोषद्रव्यादिजन्यकिल्विषैः[२८] । तिसृषु स्नानतः सद्यः त्रिभिर्दोषैर्विमुच्यते[२९] ॥५३॥
मलिनो मैथुनान्मर्त्यः स्नानात्पापैः प्रमुच्यते । तादृशी स्त्री त्रिगङ्गायां जारदोषोद्भवैस्तथा ॥५४॥
दीयते सकलं दानं विप्रेभ्योऽम्बरहाटकम् । सफलं स्नानजं पुण्यं स्नानं दानमिति श्रुतम् ॥५५॥
यः प्राप्तमर्थिनं दीनं त्यक्त्वा पात्रमुदीक्षते । तद्दानं परमार्थन्न[३०] तीर्थं क्षेत्रं न शोधयेत् ॥५६॥
यः प्राप्तप्रार्थिने दानं यस्मै कस्मै ददाति वै । तद्दानं सफलं दातुर्द्वन्द्वभावैर्विवर्जितम् ॥५७॥
उद्दिश्येशं शिवां विष्णुं दानं विप्राय योऽर्पयेत्[३१] । यस्मै कस्मै त्वनिर्णीय तद्दानं परमं महत् ॥५८॥
काचिन्मुक्ता पुरा नारी शङ्खमूले घटोद्भव । पातकैर्लिप्तगात्रा सा पतिवञ्चनजैः शृणु ॥५९॥
विशालनगरे चासीद् धर्मभक्तो हि विड्वरः[३२] । तस्य पत्नी वधूश्रेष्ठा माधवी नाम विश्रुता ॥६०॥
यूनां हृद्यामिनी नित्यं रूपसौन्दर्यशालिनी । यतः सुन्दरता[३३] प्राप्ता तया च मुनिसत्तम ॥६१॥
पूर्वजन्मनि सा सस्नौ चन्द्रभागामृतोत्तमे । रूपमेवं हि सङ्कल्प्य यूनां सा[३४] पीडनोत्सुका ॥६२॥
अतोऽभूद्रमणी नारी माधवी सुन्दरी मुने । प्रार्थ्यमाना युवजनैः कामोन्मथितचेतनैः ॥६३॥

---

अगम्यामाथि गमन गर्नु, परस्त्रीलाई सम्भोग गर्नु आदि क्रियाकलापहरूबाट पैदा भएका पापहरूबाट महापातकीहरूले पनि मुक्ति पाउँछन् । त्यस तीर्थमा स्नान गर्ने स्त्रीहरू पनि मुनिहत्या र पतिलाई दुर्वाच्य बोल्दा उत्पन्न हुने पापबाट मुक्त हुन्छन् । यस तीर्थमा तीन पटक स्नान गर्दा ऋतुकालमा विभिन्न वस्तुहरू छुनाले उत्पन्न भएका पापहरूबाट स्त्रीजातिहरू त्रिगङ्गामा स्नान गर्नाले पापमुक्त भएजस्तै गरी मुक्त हुन्छन् । मैथुनक्रियाबाट पापग्रस्त मानिस पनि यस तीर्थमा स्नान गऱ्यो भने ती सबै पापबाट मुक्त हुन्छ । त्यस्तै स्त्री त्रिगङ्गमा स्नान गर्नाले जारसँग जाँदा उत्पन्न हुने पापबाट पनि मुक्त हुन्छे ॥५१–५४॥

यदि त्यस तीर्थमा ब्राह्मणलाई वस्त्र, सुवर्ण आदि दान दिइन्छ भने त्यसको स्नानबाट भएको पुण्य र दान पनि सफल हुन्छ भन्ने सुनिएको छ । अगाडिको दुःखी माग्नेलाई छाडेर दानका लागि अर्को सत्पात्र खोजिन्छ भने त्यो दान परमार्थ दान हुँदैन । त्यसैले तीर्थमा क्षेत्र र पात्रको शुद्धिलाई विचार गरिँदैन । जसले आइपरेको जुनसुकै व्यक्तिलाई पनि दान दिन्छ, द्वन्द्वभावबाट मुक्त दाताको त्यो दान सफल हुन्छ । महादेव, पार्वती र विष्णुलाई उद्देश्य राखेर जसले जोसुकै होस्, निर्णय नगरीकन ब्राह्मणलाई दान दिन्छ, त्यो दान सबैभन्दा ठूलो हुन्छ ॥५५–५८॥

हे अगस्त्य मुनि ! उहिले कुनै त्री आफ्नो पतिलाई ठगेर ठूलो पापमा मुछिएकी थिई । शङ्खमूलमा स्नान गरेर त्यो स्त्री पापबाट मुक्त भई । विशाल नगरमा धर्मभक्त नाम गरेका विद्वान् थिए । तिनकी माधवी नाम गरेकी पत्नी थिइन् । तिनको रूप र सौन्दर्य युवकहरूको हृदयमा सधैँ वास गर्ने खालको थियो । हे अगस्त्य मुनि ! तिनले जसरी रूप र सौन्दर्य प्राप्त गरिन्, त्यो सुन्नुहोस् ॥५९–६१॥

पूर्वजन्ममा ती माधवीले मृगोत्तम, चन्द्रभागा तीर्थमा मलाई युवकहरूले भोग गरून् भन्ने इच्छाले रूपको कामना गरेर स्नान गरेकी थिइन् । हे अगस्त्य मुनि ! त्यसपछि कामवासनाले ग्रस्त चेतना भएका युवकहरूको प्रार्थना अनुसार उनी माधवी नाम गरेकी सुन्दरी स्त्री भएर पैदा भइन् ॥६२–६३॥

---

२६. स्नानात्पातकैर्मुच्यते क्षणात् इति न.सं.पु.पाठः ।
२७. स्त्रीणाञ्च तादृशं तत्र स्नातकानां विमुच्यते, इति न.सं.पु.पाठः ।
२८. ऋतूद्भूतस्पृशेद् द्रव्यदोषसम्भवकिल्विषै इति न.सं.पु.पाठः ।
२९. त्रिभिः स्नानात्स्त्रियः सद्यः त्रिगङ्गायामिव मुच्यते इति न.सं.पु.पाठः ।
३०. न परमार्थदानं तत् इति न.सं.पु.पाठः ।
३१. यो ददेत् इति न.सं.पु.पाठः ।
३२. विद्वर इति न.सं.पु.पाठः ।
३३. सौन्दर्यता इति न.सं.पु.पाठः ।
३४. युवभि इति न.सं.पु.पाठः ।

युवभिः सहसा रेमे स्वामिना[३५] ताडिताऽपि च। ताड्यमाना मुहुर्दुःखान्मातृकानाञ्च सेविनी ॥६४॥
सा स्नात्वा सङ्गमे तीर्थे वाराहीचन्द्रभागयोः। हृदि कामं समाधाय याम्यायां[३६] दिशि चाव्रजत् ॥६५॥
वाराहीप्रमुखा देव्यो मातृगणाः प्रसेविताः। कोलतीर्थे च संस्नाय चोपचारैः समर्हणैः ॥६६॥
वश्यो भवतु मे स्वामी नित्यं प्रकोपितो यतः। कालास्याप्रमुखा देवीर्याचेऽहं भवतीरिति ॥६७॥
इषे शुक्लनवम्यां सा भक्त्या मातॄः समार्हयत्[३७]। तुष्टाभ्यश्च वरं प्राप्य समाययौ स्वकं गृहम् ॥६८॥
निर्म्माल्यं प्रददौ देव्याः वशीकर्तुं[३८] प्रियाय सा। वश्यो भवतु मेऽद्यादि प्रोवाच[३९] हृदयेन वै ॥६९॥
तदादि पुरुषस्तस्या दासो जातो[४०] निरन्तरम्। युवभिः सहसा रेमे प्रार्थ्यमाना नरोत्तमैः ॥७०॥
विदूरस्थो युवा कश्चित्कर्दमो नाम विश्रुतः। तस्यास्तं भावमालोक्य तच्चरित्रपरीक्षकः ॥७१॥
सङ्ख्या चाऽऽलिखिता तस्या यावत्सुरतसम्भवा। परप्रियैः समं जाता[४१] तेनैव सततं मुहुः ॥७२॥
तन्वता तेन तल्लेखा यावत्पञ्चशतं भवेत्। पतिः परमुखात् तस्याश्चाऽश्रृणोत् चरितं बहु ॥७३॥
कुष्ठव्रणैः प्रलिप्ताङ्गस्तस्याः सुरतिपापजैः। व्रणाङ्कितः कृशाङ्गोऽसौ क्षीयमानो दिने दिने ॥७४॥

अगस्त्य उवाच

योनिदोषोद्भवैः पापैर्भार्याया लिप्यते पतिः। इत्युक्तं भवता पूर्वं कर्तैव किल पापभुक् ॥७५॥
एककृतोद्भवैः पापैरन्यः कथं प्रलिप्यते। कृतेनान्येन चान्यश्च भोक्ता भवेत्कथं वद ॥७६॥

---

आफ्नो पतिले खूबसित पिटे तापनि उनले युवकहरूसँग रमण गरि नै रहिन्। पिटाइबाट दुःख पाएर तिनले मातृकाहरूको सेवा गरिन्। वाराही र चन्द्रभागा नदीको सङ्गम भएको तीर्थमा चित्तमा काम-वासना राखेर तिनले स्नान गरिन् र दक्षिणदिशातिर लागिन्। तिनले कोलतीर्थमा स्नान गरेर वाराही आदि गरिएका मातृका देवीहरूको विभिन्न किसिमका सामग्रीहरूद्वारा पूजा गरिन् ॥६४-६६॥

हे काला मुख भएका देवी हो ! म हजुरहरूसँग प्रार्थना गर्दछु – मदेखि सधैँ क्रुद्ध भएका मेरा स्वामी मेरो वशमा आऊन्। यसो भनेर तिनले आश्विन शुक्ल नवमीका दिन भक्तिपूर्वक मातृकाहरूको पूजा गरिन्। त्यसपछि देवीहरूबाट वर पाएर उनी आफ्नो घर फर्किइन्। आफ्नो पतिलाई वश गर्ने इच्छाले मनमनै आजदेखि मेरा पनि वशमा परून् भनेर देवीको निर्माल्य पतिलाई दिइन्। त्यसै समयदेखि लिएर त्यो पुरुष सधैँ त्यसको दासजस्तो भएर रह्यो। उनी राजकुमार वा सुन्दर युवकहरूसित रमण गर्न थालिन् ॥६७-७०॥

कुनै कर्दम नाम गरेको युवकले टाढैबाट त्यसको चेष्टालाई देखेर चरित्रको परीक्षा गर्ने विचार गर्‍यो। त्यसले बारम्बार परपुरुषहरूद्वारा गरेको सुरतक्रिया सम्बन्धी क्रीडाको सङ्ख्या लेख्यो। पाँच सयसम्म त्यसले त्यो सङ्ख्या गनेर पुर्‍यायो। यता उसको लोग्नेले अरूको मुखबाट त्यसको चरित्र सुन्यो। त्यसका साथ रतिक्रीडा गर्दा भएको पापबाट उसको पतिको पूर्ण शरीर कुष्ठरोगले ग्रस्त भयो। सम्पूर्ण अङ्ग दुब्लाए, घाउ नै घाउले शरीर भरियो। ऊ दिनानुदिन दुब्लो पातलो हुँदै गयो ॥७१-७४॥

अगस्त्य मुनिले भन्नुभयो – पत्नीको योनिको दोषले गर्दा पति पनि पापले ग्रस्त हुन्छ भनेर अघि तपाईंले भन्नुभएको थियो। जुन कर्ता हो, त्यो पापी हुनुपर्ने ? एउटाले गरेको पापको फल अर्को व्यक्तिले कसरी पाउने ? एउटाले गरेको पापको भोक्ता अर्को कसरी हुन्छ ? यो कुरा बताउनुहोस् ॥७५-७६॥

---

३५. पतिना इति न.सं.पु.पाठः।
३६. तद्याम्ये इति न.सं.पु.पाठः।
३७. समर्हयन् इति न.सं.पु.पाठः।
३८. वश्येप्सया इति न.सं.पु.पाठः।
३९. प्रोक्तेति इति न.सं.पु.पाठः।
४०. दासवद्धि इति न.सं.पु.पाठः।
४१. कृत्वा इति न.सं.पु.पाठः।

स्कन्द उवाच

न दोषं दूषयेत्स्त्रीणां मद्यानि गणयेन्न च। पञ्चनखादि सीमन्तात् प्राग् विधात्रा पवित्रिताः ॥७७॥
पुमांसो मूर्तयो नः स्युः स्त्रियस्ते मूर्त्तयः प्रिये। मत्तो गरीयसी त्वार्या चेति[४२] श्रुतं शिवास्यतः ॥७८॥
तस्मान्नैव बुधः कुर्याद्वधूभ्यः कुत्सितं कदा। ताड्यमाना न चैवैताः शिक्षया बोधयेत्सदा ॥७९॥
धर्मभक्तोऽनिशं तस्याः सुवश्यो दासवद् वभौ[४३]। प्रेक्षन् चरितं शीलञ्च[४४] मधुरयन् प्रियां मुहुः ॥८०॥
भाद्रे च पूर्णिमायां सा भरण्या संयुते रवौ। शङ्खमूले समं स्त्रीभिस्तीर्थयात्राटनं ययौ ॥८१॥
भविष्यामि च देहान्ते राजकन्या त्वहं पुनः। मां प्रेक्षका युववृद्धा मोहमेष्यन्तु सन्ततम्[४५] ॥८२॥
कृत्वेति स्वैरिणी चित्ते पदे पदे गृहाद्वहिः। नमस्कृत्य महेशानं तीर्थराजञ्च भक्तितः ॥८३॥
उन्मज्ज्योन्मज्ज्य तीर्थे सा चोत्तीर्य सहसा जलात्। विप्रेभ्यः प्रददौ दानं याचकेभ्यो हि भक्तितः ॥८४॥
सौम्ये सुन्दरि ! देहीति याचन्ते तां धनं[४६] द्विजाः। करमुत्तानकं कृत्वा भाषन्ते देहि देहीति[४७] ॥८५॥
यावन्ति भूषणान्यङ्गात्तेभ्यो विमुच्य सा ददौ। परिधानं विना वस्त्रं भक्तियुक्तेन चेतसा ॥८६॥
बभूव[४८] पुष्पवृष्टिश्च व्योम्नो नादो ननाद च। साधु साध्वित्यभूच्छब्दो दिवि देवगणेरितः ॥८७॥
सूर्यच्छविविमाने तामास्थाय प्रमथा द्रुतम्। निन्युर्व्योम्नो दिवं शैवं समक्षे सर्वप्राणिनाम् ॥८८॥
अयुताब्दं सुखं भुङ्क्त्वा चोमामहेश्वरे पुरे। सोद्भूता च पुनस्तत्र सुप्रभाख्ये महापुरे[४९] ॥८९॥

---

कार्तिक स्वामीले भन्नुभयो– नारीहरूको दोष देखेर उनीहरूलाई दूषित मान्नु हुँदैन। उनीहरूले सुरापान आदि दूषित कर्म गर्दछन् भने पनि वास्ता गर्नुहुँदैन किनकि पहिले ब्रह्माजीले सिउँदोदेखि पाउका पाँच नङसम्मको नारीशरीरलाई पवित्र तुल्याउनुभएको छ। हे गौरी ! पुरुषहरू हाम्रा मूर्ति र स्त्रीहरू तिम्रा मूर्ति हुन्। मभन्दा तिनीहरू श्रेष्ठ छन् भनेर भगवान् शङ्करले भन्नुभएको मैले सुनेको छु। त्यसैले विद्वान्ले कहिल्यै पनि स्त्रीजातिसँग नराम्रो व्यवहार गर्नुहुँदैन। सकेसम्म यिनीहरूलाई पिट्नुहुँदैन। शिक्षा दिएर सम्झाई बुझाई गर्नुपर्छ। यसरी त्यो धर्मभक्तले तिनको चरित्र र मधुरभावको भोग गर्दै सधैँ दासजस्तो भएर व्यवहार गऱ्यो ॥७७–८०॥

भाद्र महिनाको पूर्णिमाको दिन भरणीनक्षत्रले युक्त भएको आइतबार शङ्खमूल तीर्थमा स्त्रीहरूलाई साथमा लिएर धर्मभक्त तीर्थयात्रा गर्न गयो। यो शरीर छोडेपछि म फेरि राजकन्या भएर जन्मनेछु। मलाई देख्ने वृद्ध, युवा सबै मोहित बनून् ॥८२॥ पाइलैपिच्छे मनमा यस्तो कुरा खेलाउँदै त्यो व्यभिचारिणी भक्तिका साथ तीर्थराज र महेश्वरलाई ढोग्दै घरबाट बाहिर निस्किई। तीर्थमा पुगेर उसले डुबुल्की मारेर जलबाट बाहिर निस्किई। अनि उसले ब्राह्मण र याचकहरूलाई भक्तिपूर्वक दान गरी ॥८१–८४॥

हे सुन्दरी ! हामीहरूलाई अरू पनि धन द्रव्यहरू देऊ भनेर हात उत्तानो पारी ती ब्राह्मणहरूले मागे। उसले लगाएका वस्त्रहरूलाई छाडेर सबै गहनाहरू आङबाट उतारेर भक्तिपूर्वक खुसी हुँदै समर्पित गरी। आकाशबाट पुष्पवृष्टि भयो, बाजा बज्यो, ठीक भयो ठीक भयो भनेर देवताहरूले बोलेको शब्द सुनियो। सूर्यजस्तो कान्ति भएको विमानमा त्यस स्त्रीलाई राखेर प्रमथ आदि गणहरूले आकाशमार्ग हुँदै सम्पूर्ण प्राणीहरूका साक्षी भगवान् शङ्करको लोकमा लगे। दश हजार वर्षसम्म उमामहेश्वरको लोकमा सुखभोग गरेर त्यो स्त्री सुप्रभा नाम गरेको महानगरमा प्रदा भई ॥८५–८९॥

---

४२. त्वार्ये इति इति न.सं.पु.पाठः।
४३. दासवच्चरेत् इति न.सं.पु.पाठः।
४४. प्रेक्षञ्चरितं सौभावम् इति न.सं.पु.पाठः।
४५. मोहिष्यन्तु निरन्तरम् इति न.सं.पु.पाठः।
४६. वसुम् इति न.सं.पु.पाठः।
४७. देहि देहीति भाषते इति न.सं.पु.पाठः।
४८. ववर्ष इति न.सं.पु.पाठः।
४९. महत्पुरे इति न.सं.पु.पाठः।

सा वै प्रभावती नाम्नी बलेः पुत्री सुलक्षणा। जहार तां द्रुतं कामः कामस्यातिप्रियाऽभवत् ॥९०॥
पत्न्या विरहितो वैश्यो दुःखदग्धो निरन्तरम्। रुद्रात्मा निर्ज्जनोऽजस्रं स्नानदानार्चने रतः ॥९१॥
धर्मभक्तो ययौ स्नातुं तीर्थे मृगोदके ततः। कार्त्तिकपूर्णिमायां स कृत्तिकायुक्कलानिधौ ॥९२॥
भविष्यति ह्ययं देहो देहान्ते नृपविग्रहः। विचार्येति[५०] हृदा वैश्यः सस्नौ तीर्थे मृगोदके ॥९३॥
याचकेभ्यो द्विजातिभ्यो ददौ दानं यथाविधि। प्रसन्नमानसो भूत्वा स्वार्थमुद्दिश्य विड्वरः ॥९४॥
ध्यायमाने शिवे तस्मिन्नादिमृगान्तिके मुदा। अवतेरुर्गणा व्योम्नस्तत्र विमानपालयः ॥९५॥
गणा याने तमास्थाय निन्युः शिवपुरं क्षणात्। सविग्रहं वसन्तत्र सहस्राब्दं सुखी बभौ[५१] ॥९६॥
प्रादुर्भूतस्तदन्ते स काञ्चीपुर्यां नृपात्मजः। स एव सूर्यकेतुः सन्[५२] विशालनगरेऽवसत् ॥९७॥
कुष्ठव्रणाङ्कितः शूद्रो ब्रह्मपद्यां जलं पपौ। धौताङ्घ्रिहस्तवक्त्रश्च वेपमानश्च दुर्बलः[५३] ॥९८॥
कथङ्कारं भवेद्[५४] विप्रो मद्देहोऽयमिति भावयन्। राधशुक्लतृतीयायामिति कृत्वा जलं पपौ ॥९९॥
क्वचित्कालान्तरे शूद्रः पञ्चत्वं प्राप्तवान् पुनः। अन्तर्वेद्यां समुद्भूतः श्रोत्रियस्य कुले द्विजः ॥१००॥
द्विजाधमोऽभवत्सोऽपि पूर्वजन्मविपाकतः। असङ्कल्पकृतस्नानाद्विरूपाक्षोऽभिधानतः ॥१०१॥
एवञ्च बहवो मर्त्यास्तीर्थेषु जीवनाप्लवात्। सुकृतं लेभिरे शश्वद् दुर्लभं सर्वजीविनाम् ॥१०२॥
अष्टमी नवमी सर्वा चाऽमावास्या चतुर्दशी। पूर्णिमा कुहुःसङ्क्रान्तिस्ताः पूज्याः पक्षयोर्द्वयोः ॥१०३॥
सामान्यतः सदाष्टम्यां स्नातस्य द्विगुणं फलम्। तथाष्टम्यां नवम्याञ्च शतगुणं फलं भवेत्[५५] ॥१०४॥

---

त्यो स्त्री प्रभावती नाम गरेकी सर्वलक्षणसम्पन्न बलिकी छोरी भएर पैदा भई। त्यसलाई कामदेवले हरण गरे र त्यो कामदेवकी अत्यन्त प्यारी भई। पत्नीबाट विछोड भएपछि त्यो वैश्य सधैँ दुःखित भएर हिँड्न थाल्यो। रुद्रजस्तै बनेर एकान्तस्थलमा सधैँ स्नान, दान र पूजामा संलग्न हुन्थ्यो। त्यसपछि त्यो धर्मभक्त कार्तिक पूर्णिमाको दिन चन्द्रमा कृत्तिका नक्षत्रमा भएको बेला स्नान गर्न मृगोदक तीर्थमा गयो। यो मेरो शरीर मरेपछि राजाको शरीर भएर जन्मियोस्। यस्तो हार्दिक कामना गर्दै त्यस वैश्यले मृगोदक तीर्थमा स्नान गऱ्यो। त्यस वैश्यले माग्ने र ब्राह्मणहरूलाई आफ्नो स्वार्थलाई लक्ष्य गरेर प्रसन्न हुँदै विधिपूर्वक दानहरू दियो ॥९०–९४॥

आदिमृगको नजिकै बसेर ऊ शिवजीको ध्यान गर्न थाल्यो। त्यसैबेला आकाशबाट विमान लिएका शिवका गणहरू उत्रिए। गणहरूले त्यसलाई यानमा राखेर तुरुन्त शिवपुरमा लगे। त्यहाँ त्यो वैश्य एक हजार वर्षसम्म सशरीर सुखपूर्वक बस्यो।त्यसपछि त्यो व्यक्ति काञ्ची नगरीमा राजाको छोरो भएर जन्मियो। त्यही नै सूर्यकेतु हो। त्यो विशाल नगरमा गएर बस्यो ॥९५–९७॥

कुष्ठरोगले युक्त भएको त्यस शूद्रले ब्रह्मपदीको पानी पियो, अशक्त हुँदा हृदय कपाउँदै उसले हात, गोडा र मुख धोयो। कसरी मेरो यो शरीर ब्राह्मणको शरीर होला ? यस्तो चिन्तन गर्दै बैशाख शुक्लपक्ष तृतीयाका दिन उसले त्यहाँ जल पियो। समय बित्दै गएपछि त्यो शूद्र मऱ्यो। त्यसपछि ऊ वैदिक कुलमा ब्राह्मण भएर अन्तर्वेदी भन्ने ठाउँमा जन्मियो। तर, पूर्वजन्मका नराम्रा कामले गर्दा सङ्कल्प नगरीकन स्नान गरेको हुँदा अधम बाहुन भएर विरूपाक्षको नामले पैदा भयो ॥९८–१०१॥

यसरी तीर्थमा स्नान गर्दा धेरै मानिसहरूले सम्पूर्ण प्राणीहरूका लागि सुलभ नभएको पुण्य प्राप्त गरे। दुवै पक्षका अष्टमी तिथि, नवमी तिथि, औँसी, चतुर्दशी, पूर्णिमा र कुहु तथा सङ्क्रान्तिहरू पूजनीय छन् अर्थात् शुभकर्मका लागि ग्राह्य छन्। सामान्य दिनभन्दा अष्टमीमा स्नान गरेको दुईगुणा बढी फल हुन्छ। त्यस्तै अष्टमी र नवमीमा स्नान गर्नाले सय गुणा फल प्राप्त हुन्छ ॥१०२–१०४॥

---

५०. इति चिन्त्य इति न.सं.पु.पाठः।
५१. सुखाप्तवान् इति न.सं.पु.पाठः।
५२. स्यात् इति न.सं.पु.पाठः।
५३. ह्यशक्तो वेपथुर्हृदा इति न.सं.पु.पाठः।
५४. कथं भवेन्नु, इति न.सं.पु.पाठः।
५५. लभेत् इति न.सं.पु.पाठः।

चतुर्दश्यां द्विसाहस्रं कुहावयुतमेव च। सङ्क्रान्त्याञ्च गुणं लक्षं पूर्णिमायाञ्च कोटिशः ॥१०५॥
द्वयोस्तदुपरागेषु वाग्वत्यां स्नाति यो[५६] बुधः। दानयज्ञार्चनानाञ्च कोटिकोटिगुणं भवेत्[५७] ॥१०६॥
योगनक्षत्रयुक्तेषु स्नानात्तिथिषु सर्वदा। कोटिकोटिगुणं पुण्यं प्रोक्तञ्च लभते नरः ॥१०७॥
तेभ्यः श्रेष्ठन्तु[५८] वाग्वत्यां तद्धरिवासरेषु च। पण्डितो विधिवत्स्नानात्कोट्ययुतफलं लभेत् ॥१०८॥
संस्नाति[५९] यश्च वाग्वत्यां युगादिषु च पर्वसु। ब्रह्महत्यादिभिः पापैर्मुक्तो गच्छति शाङ्करम् ॥१०९॥
माहात्म्यमेतद् वरवाग्भवायाः, उदीरितं ते च[६०] मया सुपुण्यम्।
श्रुत्वा च नित्यं लभते हि मुक्तिं वाञ्छन्ति देवाः श्रवणोत्सुकास्तत् ॥११०॥

इति श्रीस्कन्दपुराणे वाग्मतीमाहात्म्यं तीर्थयात्राभ्रमणं नाम ऊननवतितमोऽध्यायः ॥८९॥

---

चतुर्दशीका दिन गरेको स्नानले दुई हजार गुणा बढी फल दिन्छ। कुहुमा गरेको स्नानबाट दश हजार गुणा बढी फल पाइन्छ। सङ्क्रान्तिमा गरेको स्नानबाट लाख गुणा बढी फल उपलब्ध हुन्छ। पूर्णिमामा गरेको स्नानले करोडौँ गुणा बढी फल दिन्छ। सूर्य र चन्द्र ग्रहणमा जुन विद्वान्ले वाग्वतीमा स्नान गर्छ, त्यसले दान, यज्ञ र पूजा गरेको भन्दा करोडौँ करोड गुणा बढी फल पाउँछ ॥१०५-१०६॥

शुभ योग र शुभ नक्षत्रले युक्त भएको तिथिमा सधैँ स्नान गर्नाले मानिसले करोडौँ करोड गुणा पुण्य प्राप्त गर्छ भनेर भनिएको छ। एकादशीका दिन वाग्वतीमा स्नान गर्नु, त्यो भन्दा पनि उत्तम मानिन्छ। विद्वान् पुरुषले विधिपूर्वक त्यसरी स्नान गर्दा अरबौँ गुणा बढी फल पाउँछ। जुन पुरुषले युगको आदि पर्वमा वाग्वतीमा स्नान गर्छ, त्यो पुरुष ब्रह्महत्या आदि गरिएका पापबाट मुक्त भएर भगवान् शङ्करको धाममा पुग्छ ॥१०७-१०९॥

हे अगस्त्य मुनि ! उत्तम वाणीबाट पैदा भएकी वाग्वती नदीको माहात्म्य मैले बताएँ। जसले यस नदीको माहात्म्य सधैँ सुन्छ त्यसले मुक्ति पाउँछ। देवताहरू पनि त्यो माहात्म्य सुन्न उत्सुक हुन्छन् ॥११०॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा वाग्मतीमाहात्म्य र त्यहाँको तीर्थयात्राविधिनामक
उनान्नब्बेऔँ अध्याय पूरा भयो।

पराम्बा वाग्वादिनी भगवतीको असीम अनुकम्पाबाट पोरकनी पाल्पा निवासी पतिव्रताशिरोमणि स्वर्गीय माताश्री दिव्यलक्ष्मी ढकाल र सज्जनमुकुटमणि स्वर्गीय पिताश्री चूडामणि ढकालका कनिष्ठ पुत्र नेपाल संस्कृत विश्वविद्यालय सेवा आयोगका अध्यक्ष प्रा. डा. वेणीमाधव ढकालद्वारा गरिएको
महर्षि वेदव्यासरचित स्कन्दमहापुराणअन्तर्गत हिमवत्खण्डको
अभिनव सम्पादन एवं नरहरिनामक नेपाली भाषानुवादमा
नेपालमाहात्म्य प्रकरण पूरा भयो।

---

५६. स्नायते इति न.सं.पु.पाठः।
५७. लभेत् इति न.सं.पु.पाठः।
५८. ताभ्यः श्रेष्ठस्तु इति न.सं.पु.पाठः।
५९. स्नायते इति न.सं.पु.पाठः।
६०. नद्याश्च तेऽगस्त्य इति न.सं.पु.पाठः।

# हिमवत्खण्ड

## (नेपाली अनुवादसहित मूलपाठ)

## प्रकरण- ५

## चौसट्ठीलिङ्ग प्रकरण

(अध्याय ९० - १६३)

ॐ नीवारं तत् भुजयुगगतं भुक्तवन्तं च दोष्णा
म्लेच्छैरन्यैस्तदनुगमनैः सेव्यमानं किरातैः ।
मुष्ट्या मुष्ट्या ह्यसकृदुचितं सेवकेभ्यो ददानं
कुक्ष्यालम्बप्रवरवसनं शङ्करं को हि विद्यात् ॥

म्लेच्छैः सार्द्धं खलु मृगगणान् मारयन्तञ्च नित्यं
बाणैरेतद्वनविचरणं म्लेच्छरूपं महेशम् ।
तेभ्यो भूयो मृगसुपललं भागधेयं ददानं
भक्तान् धर्तुं विपिनविचरान् तान् पशून् मारयन्तम् ॥

हिमवतखण्ड, चौसट्ठीलिङ्ग प्रकरण, अध्याय - १५५, श्लो. १९, २०

अर्थ-

हातमा नाभो धान लिएर खाँदै गरेका किरातरूपधारी शिवजीका पछिपछि म्लेच्छ र किरातहरू लागेका थिए। उहाँले मुठीले त्यो अन्नको भाग तिनीहरूलाई बाँड्नुभएको थियो। कोखामा झुन्डिएका उत्कृष्ट वस्त्रले गर्दा किरातरूप भगवान्लाई उहाँ नै भगवान् शङ्कर हुनुहुन्छ भनेर चिन्ने कोही थिएन। ती म्लेच्छहरूलाई साथमा लिएर छिटेछिटे हिँड्ने किरातरूपधारी शिवजीले थुप्रै मृगहरूलाई मार्नुभयो र मासुलाई भाग लगाएर तिनीहरूका बीचमा बाँडिदिनुभयो। तिनीहरूको पाप नाश गरी आफूमा समाहित गर्नकै लागि महादेवले ती भक्त पशुहरूलाई मार्नुभएको थियो।

## नवतितमोऽध्यायः

नैपालतीर्थेषु विरूपाक्षस्य यात्रा दुर्गातीर्थमहिमा च

लोमहर्षण उवाच

श्रुत्वा चैतां कथां दिव्यां मुमुदे कुम्भजो भृशम्[1] । वाग्वत्याः किल माहात्म्यं तेषां मुक्तिं तथाद्भुताम्[2] ॥१॥
भक्त्या स्कन्दं प्रणम्यादौ चापृच्छत् कुम्भजो मुदा । नेपालस्यैव माहात्म्यं हिताय ज्ञानिनां तथा ॥२॥

अगस्त्य उवाच

भगवन् सर्ववित् ! स्कन्द ! त्वत्प्रसादाच्छ्रुतं मया । माहात्म्यञ्चैव वाग्वत्याश्चाद्भुतं पापनाशकम् ॥३॥
भूयोऽहं श्रोतुमिच्छामि माहात्म्यं त्वत्तः कार्तिक । अन्यासां सरितां तत्त्वं तीर्थानाञ्च विशेषतः ॥४॥
लिङ्गानाञ्च समुद्भूतिं[3] तेषां नेपालजन्मनाम् । चतुःषष्टिप्रसंख्यानां माहात्म्यं हि तथा पुनः ॥५॥
प्रकाशितानि लिङ्गानि केन केन च कानि च । कैः कैर्लब्धो वरश्चेति केषामाराधनाद् विभो[4] ॥६॥
तत्तत्तीर्थेषु च स्नानात्कियन्ति च फलानि च । लब्धानि कैः कदा स्कन्द स्थानप्रमाणमेव च ॥७॥
स्नातव्यञ्च कदा काले केषु केषु दिनेषु च[5] । तीर्थयात्रादिकं सर्वं वद मे शङ्करात्मज ॥८॥

स्कन्द उवाच

अहो धन्यतमोऽगस्त्य ! यद्बुद्धिरीदृशी तव । तत्कथानौप्रवेशेन भवाब्धिं तारयेद्यया ॥९॥
नैपालानाञ्च लिङ्गानां तीर्थानाञ्च विशेषतः । शृणु वक्ष्यामि तत्सर्वं माहात्म्यञ्च यथाऽभवत् ॥१०॥
पूर्वोक्तो यो द्विजोऽगस्त्य विरूपाक्षोऽभिधानकः । अन्तर्वेद्यां नगर्यां स कुले महत्यजायत ॥११॥

---

### अध्याय – ९०

नैपालतीर्थहरूमा विरूपाक्षको यात्रा र दुर्गातीर्थको महिमा

लोमहर्षणले भने – वाग्वतीको माहात्म्यले युक्त भएको वृत्तान्त र तिनीहरू मुक्त भएको कथा सुनेर अगस्त्य मुनि अत्यन्त प्रसन्न हुनुभयो । त्यसपछि उहाँले भक्तिपूर्वक कार्तिक स्वामीलाई नमस्कार गर्नुभयो र ज्ञानीहरूको हितका निमित्त प्रसन्न हुँदै नेपालको माहात्म्य सोध्नुभयो ॥१–२॥

अगस्त्य मुनिले भन्नुभयो – हे सर्वज्ञ ! हे भगवान् स्कन्द ! हजुरको अनुग्रहबाट मैले पापनाश गर्ने अचम्म लाग्दो वाग्वतीको माहात्म्य सुनेँ । म फेरि हजुरबाट अरू नदीहरूको र विशेष गरी तीर्थहरूको तत्त्व तथा नेपालमा पैदा भएका चौंसठ्ठी लिङ्गहरूको माहात्म्य सुन्न चाहन्छु । कसले, कुन–कुन लिङ्गलाई प्रकाशित गऱ्यो ? यी लिङ्गहरूको आराधना गरेर हे प्रभु ! क–कसले वर पाए ? ती–ती तीर्थमा स्नान गर्नाले के कस्तो फल पाइन्छ ? हे कार्तिक स्वामी ! कहिले क–कसले के–के फल पाए ? तिनीहरूको स्थानको प्रमाण कति हो ? त्यो पनि सुन्न चाहन्छु । हे कार्तिक स्वामी ! कुन–कुन समयमा र कुन दिनमा स्नान गर्नुपर्छ ? तीर्थयात्रा आदि गर्नुपर्छ ? त्यो सबै मलाई बताउनुहोस् ॥३–८॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! तिमी धन्य रहेछौ, किनभने तिम्रो यस्तो बुद्धि छ, जुन बुद्धिले कथारूपी डुङ्गामा प्रवेश गराएर संसाररूपी समुद्र तार्छ । नेपालभित्र रहेका लिङ्गहरूको विशेष गरी तीर्थहरूको सबै माहात्म्य जस्तो छ, त्यस्तै म बताउँछु, सुन्नुहोस् । हे अगस्त्य मुनि ! विरूपाक्ष नाम गरेको ब्राह्मण अन्तर्वेदी नाम गरेको नगरमा ठूलो कुलमा पैदा भयो भनेर मैले पहिले बताएको थिएँ ॥९–११॥

---

१. भृशं मुमोद कुम्भज इति न.सं.पु.पाठः ।
२. तथाद्भुतम् इति न.सं.पु.पाठः ।
३. समुद्भूतम् इति न.सं.पु.पाठः ।
४. कैः कैर्लब्धं वरञ्चैव तेभ्यश्चाराधनाद्विभो इति न.सं.पु.पाठः ।
५. कस्मिन्कस्मिन् हि काले च स्नातव्यं यद्दिनेषु च इति न.सं.पु.पाठः ।

पूर्वजन्मविपाकेन पापाचारोऽभवद्धि सः । मातृगमनसंलग्नः[६] सुरापानरतोऽनिशम् ॥१२॥
मांसाहारी त्वनाचारी वेश्यागमनतत्परः । जातिभ्रष्टोऽन्वयैस्त्यक्तो वेदशास्त्रविवर्जितः ॥१३॥
किञ्चित्कालान्तरेऽसौ हि देशाद्विनिर्ययौ मुने । त्यक्त्वा प्रियां प्रियं गोत्रं व्रीडया व्यथितो द्विजः ॥१४॥
भ्रमति स्म क्षितौ देशान्निर्जनः[७] कुष्ठपीडितः । हिमाद्रिं प्राप्तवान् भ्रान्त्वा[८] देशाद्देशं वनाद्वनम् ॥१५॥
त्रिकूटानाञ्च मध्ये स प्राप्तवान् कुलपीठकम् । उवाह यत्र गम्भीरं लीलावती च कौशिकी ॥१६॥
तत्राऽऽस्ते चाऽऽदिलिङ्गं वै सर्वलोकैः प्रपूजितम् । लोकवाञ्छाप्रदं नित्यं पूजकानाञ्च भक्तितः ॥१७॥
तत्रैव गाधिपुत्रस्य विश्वामित्रस्य चाऽऽश्रमः । ततस्तटञ्च कौशिक्या अगमद्रोगपीडितः ।
ध्यात्वा प्लवन् स्थितं तत्र ददर्श नेमुनिं हि सः ॥१८॥
तत्र संध्यावसानेऽसौ चाऽऽगमच्च तदन्तिकम् । प्रणनाम हि तं भक्त्या मेदिन्यामश्रु मोचयन् ॥१९॥
प्रेक्ष्य कुष्ठाङ्कितं विप्रं भक्तियुक्तं सुनिर्जनम् । व्याचष्टे नेमुनिस्तस्मै पृच्छन्[९] करुणया गिरा ॥२०॥

नेमुनिरुवाच

कोऽसि भवानिहैकाकी[१०] कुतश्चाऽत्र समागतः । निर्जने विपिने भीष्मे सिंहशार्दूलसेविते ॥२१॥
कथं त्वं कुष्ठवान् रोगी मालिन्यदूषिताननः[११] । यज्ञसूत्रोपवीताङ्ग ईदृशी ते दशा कथम् ॥२२॥

---

त्यो पूर्वजन्ममा गरेको कर्मले गर्दा पापी भयो। त्यो मातृगामी र सुरापायी थियो। सधैँ मासु खान्थ्यो, दुराचारहरू गर्थ्यो, वेश्यागमन गर्थ्यो, जातिभ्रष्ट भएको थियो, वेदशास्त्रबाट ऊ वर्जित हुन पुग्यो। त्यसैले दाजुभाइहरूले उसलाई त्यागिदिए। केही समय बितेपछि लाजले भुतुक्क भएर त्यो ब्राह्मण आफ्नी पत्नी र प्यारो वंशलाई छोडेर देशबाट बाहिर निस्कियो ॥१२-१४॥

कुष्ठरोगले पीडित भएर त्यो ब्राह्मण पृथ्वीतलमा घुम्न थाल्यो। एक देशबाट अर्को देश, एक वनबाट अर्को वन नाघ्दै त्यो हिमालय पर्वतमा पुग्यो। त्यो ब्राह्मण त्रिकूट पर्वतहरूको बीचमा रहेको कुलपीठक नाम गरेको पर्वतमा पुग्यो। त्यहाँ लीलावती र कौशिकी नदी ठूलो वेगले बगेका छन्। भक्तिपूर्वक पूजा गर्ने प्राणीहरूको इच्छा पूर्ण गराउने र सम्पूर्ण प्राणीहरूद्वारा पूजित भगवान्को आदिलिङ्ग त्यहाँ रहेको छ ॥१५-१७॥

त्यसै कोशीनदीको तीरमा रहेको गुफामा तपस्या गरेर बस्ने गाधिमुनिका छोरा विश्वामित्रको आश्रम छ। त्यसपछि रोगले पीडित भएको त्यो ब्राह्मण कोशी नदीको तीरमा पुग्यो। उसले स्नान गरेपछि ध्यान गरेर बसिरहेका नेमुनिलाई देख्यो। सन्ध्या समय बितेपछि त्यो ब्राह्मण नेमुनिको नजिकै गयो र भक्तिपूर्वक पृथ्वीमा आँसु खसाल्दै उनलाई नमस्कार गर्‍यो। कुष्ठरोगले ग्रस्त भएको, एक्लो, भक्तिले युक्त भएको त्यस ब्राह्मणलाई देखेर दयाको भावना राख्दै नेमुनिले उसलाई सोधे ॥१८-२०॥

नेमुनिले भन्नुभयो – तिमी को हौ ? एक्लै सिंह, बाघहरू बसेको यस्तो निर्जन डरलाग्दो वनमा कहाँबाट आइपुग्यौ ? तिमी कसरी कुष्ठरोगले ग्रस्त भयौ ? तिम्रो मुख किन मलिन छ ? शरीरमा जनै धारण गर्ने ब्राह्मण भएका तिम्रो यस्तो दुर्दशा कसरी भयो ? ॥२१-२२॥

---

६. मातृगमनसंभूतः कश्चित् इति न.सं.पु.पाठः ।
७. क्षितिदेशान्निर्जनः इति न.सं.पु.पाठः ।
८. लङ्घ्य इति न.सं.पु.पाठः ।
९. प्रष्टुम् इति न.सं.पु.पाठः ।
१०. भवान् समेकाकी इति न.सं.पु.पाठः ।
११. मलिनैः संयुताननः इति न.सं.पु.पाठः ।

विरूपाक्ष उवाच

तात मुने हि पापात्मा विरूपाक्षाऽभिधानकः। धर्मशर्मसुतोऽहञ्च धर्मकर्मविवर्जितः ॥२३॥
श्रोत्रियाणां कुले जातो[१२] भ्रष्टाचारो भवाम्यहम्। दैवयोगविपाकेन विपुलं पापमाचरम्[१३] ॥२४॥
महापापविलिप्ताङ्गो व्रणी कुष्ठी सुविह्वलः। परिभ्रम्य क्षितौ[१४] देशान् दिष्टेनैवमिहागतः ॥२५॥
कस्माच्चाऽत्र विमुच्येऽहं पापैस्तात[१५] सुदुःसहैः। सुनिर्मलः कथं कायो मे भविष्यति तद्वद ॥२६॥
पापानलप्रदग्धोऽहं दुःखार्णवनिमज्जकः। उपदेशकृपारज्जुबन्धैरुद्धयतां विभो ॥२७॥

सिद्धर्षिरुवाच

सत्यमुक्तं त्वया वत्स पापात्मा पापकृद् भवान्। पूर्वजन्मविपाकेन पापाचारो न संशयः ॥२८॥
तत्पापानां विनाशाय कुरु तीर्थाटनं ध्रुवम्। ततः पापानि नश्यन्ति तीर्थजलनिषेवणात्[१६] ॥२९॥
दर्शनाच्चैव लिङ्गानां मुच्यते बहुपातकैः। स्पर्शनात्तैश्च पापैस्त्वं न लिप्यसे पुराकृतैः[१७] ॥३०॥

विरूपाक्ष उवाच

कस्मिन्तीर्थे मुने पूर्वं स्नानं कार्यं कदा कथम्[१८]। स्पृश्यते सर्वविल्लिङ्गं कथं प्रपूज्यते मया ॥३१॥
विधिना केन लिङ्गानि स्नाप्यानि पूज्यते कथम्। अञ्जसा सर्वमेवैतत्[१९] वदाऽऽर्य ! शुभदेशक ॥३२॥

---

विरूपाक्षले भने – हे मुनि ! म पापाचारी छु, विरूपाक्ष नाम भएको धर्मशर्माको म पुत्र हुँ, धर्मकर्मबाट म पतित भएको छु। हे मुनि ! म वैदिक कुलमा जन्मिएर पनि दैवको खटनले गर्दा ठूलो पाप गर्ने भ्रष्यचारी भएको छु। मेरा सबै अङ्ग अतिशय पापले लिप्त भएका छन्, घाउ नै घाउ छ, कुष्ठरोग लागेको छ, आत्तिएको छु। देशहरू घुम्दै भाग्यले म यहाँ आइपुगें। हे तात ! कसरी यो व्यक्ति खपिनसक्नु यो पापबाट मुक्त हुन्छ ? कसरी मेरो यो शरीर पापरहित बन्छ ? त्यो कुरा मलाई बताउनुहोस्। हे विभु ! म पापको आगामा पिल्सिएको छु र दुःखरूपी समुद्रमा डुबेको छु, उपदेशको कृपारूपी डोरीले बाँधेर मलाई उद्धार गर्नुहोस् ॥२३-२७॥

सिद्धऋषिले भन्नुभयो – हे बाबु ! तिमीले साँचो कुरा बतायौ, तिमी पापी नै हौ, पापाचारी हौ, पूर्वजन्मको कर्मले गर्दा तिमी पापी भयौ, यसमा शङ्का छैन। हे ब्राह्मण ! ती पाप नाश गर्नका लागि तीर्थभ्रमण गर। तीर्थको जल स्पर्श गर्नाले सबै पापहरू नाश हुन्छन्। कुनै पनि मानिस शिवलिङ्गहरूको दर्शन गर्नाले अनेकथरी पापहरूबाट मुक्त हुन्छ। तिमील शिवलिङ्गको स्पर्श गर, त्यसबाट तिमी पूर्वजन्मका सबै पापहरूबाट मुक्त हुनेछौ ॥२८-३०॥

विरूपाक्षले भने – हे शुभचिन्तक मुनि ! कुन तीर्थमा विधिपूर्वक पहिले कसरी स्नान गर्नुपर्छ ? हे सर्वज्ञ ! लिङ्गहरूको कसरी स्पर्श गर्नुपर्छ ? कसरी लिङ्गको मैले पूजा गर्ने ? कुन विधिले लिङ्गहरूलाई स्नान गराउने र पूजा गर्ने ? हे शुभ उपदेशक ! यो सब विधि मलाई यथार्थ बताउनुहोस् ॥३१-३२॥

---

१२. श्रोत्रियकुले प्रसूतोऽपि इति न.सं.पु.पाठः।
१३. महत्पापाचरो मुने इति न.सं.पु.पाठः।
१४. क्षितिम् इति न.सं.पु.पाठः।
१५. कस्माच्च मुच्चये पापैरहं तात इति न.सं.पु.पाठः।
१६. तीर्थजलस्पृशाद् द्विज इति न.सं.पु.पाठः।
१७. तेषाञ्च स्पर्शनात् पापै लिप्यते न पुराकृतैः इति न.सं.पु.पाठः।
१८. स्नायते विधिवत् कथम् इति न.सं.पु.पाठः।
१९. एतत्सर्वमञ्जसा मह्यम् इति न.सं.पु.पाठः।

नेमुनिरुवाच

स्नायात् तीर्थजले[२०] चाऽऽदौ विभूत्या लेपयेत्तनुम्। कृत्वा सन्ध्याञ्च रुद्राक्षी भक्त्या लिङ्गं प्रपूजयेत्[२१] ॥३३॥
सायं दत्त्वा प्रदीपाँश्च कृत्वा जागरणं पुनः[२२]। श्रोतव्या खलु मन्तव्या तत्कथा भावतस्त्वया ॥३४॥
अत्रैव च मम क्षेत्रे बहुतीर्थानि[२३] सन्ति च। सहस्राणि तथांशैश्च तिस्रःकोट्योऽर्धकोटिभिः ॥३५॥
चतुःषष्टिश्च लिङ्गानि क्षेत्रेऽस्मिन् सन्ति मे सदा। देवदानवगन्धर्वैरर्चितानि वराप्तये ॥३६॥
नेपाले पुण्यभूमौ च मम नाम्नाभिधानके। देव्याः प्रसादतो वत्स ! ज्ञेयात् पुण्यतरं स्थलम् ॥३७॥
एतस्यां स्नायतां वत्स ! कौशिक्यां प्राक् च भक्तितः। समर्चयादिलिङ्गं त्वं ततोऽन्यत्र प्रगच्छ वै ॥३८॥
यत्र यत्र स्थितं तीर्थं तत्र तत्राप्लवं कुरु। तत्र तत्र स्थितं लिङ्गं भक्त्या प्रपूजयानिशम् ॥३९॥
तत्रोषित्वा निशामेकां भक्तिभावैर्हरात्मना। भविष्यसि सुनिष्पापो लब्धकामो नरोत्तमः ॥४०॥

स्कन्द उवाच

इत्याकर्ण्य वचस्तस्य विरूपाक्षो हि नेमुनेः। स्नातुं प्रचक्रमेऽगस्त्य वाक्येन विधिवद्यथा ॥४१॥
माघकृष्णचतुर्दश्यां मघर्क्षेण च संयुजि[२४]। भक्त्या सस्नौ स तत्तीर्थे दुर्गाख्ये स्वस्पृहाप्रदे ॥४२॥
उपदेशं समादाय पञ्चोपचारकैर्मुनेः। आनर्च स च तन्मन्त्रैरादिलिङ्गं सुभक्तितः ॥४३॥
दत्त्वा दीपं निशायां स रुद्रजापी विनिद्रकः। अपृच्छन्नेमुनिं भक्त्या माहात्म्यं तीर्थलिङ्गयोः ॥४४॥

---

नेमुनिले भन्नुभयो – सर्वप्रथम स्नान गरेर शरीरमा भस्मलेपन गरी रुद्राक्ष धारण गरेर सन्ध्यावन्दन गरी भक्तिपूर्वक लिङ्गमा पूजा गर्नुपर्दछ। साँझमा बत्ती बालेर जागरण गरी तिमीले भक्तिभावनापूर्वक लिङ्गहरूको कथा सुन्ने र मनन गर्ने काम गर्नुपर्छ। यहीँ मेरा क्षेत्रमा साढे तीन करोड पन्ध्रसय तीर्थहरू छन्। यस क्षेत्रमा देवता, दानव र गन्धर्वले वर प्राप्तिका लागि पूजा गरिएका चौसट्ठी लिङ्गहरू छन् ॥३३–३६॥

हे बाबु ! मेरो नामले प्रसिद्ध भएको पुण्यभूमि नेपालमा पनि देवीका प्रसादले अनेक पुण्यस्थलहरू पैदा भएका छन् भन्ने कुरा बुझ। हे बाबु ! पहिले तिमी भक्तिपूर्वक यो कौशिकी नदीमा स्नान गर, अनि आदिलिङ्गको भक्तिपूर्वक पूजा गर, त्यसपछि तिमी अन्यत्र जाऊ। जहाँ जहाँ तीर्थ छन्, त्यहाँ त्यहाँ स्नान गर। ती ठाउँमा रहेका लिङ्गहरूको सधैँ भक्तिपूर्वक पूजा गर। ती तीर्थहरूमा भक्तिभावका साथ आफ्नो आत्मामा भगवान् शिवलाई धारण गरेर बस, तिमी निष्पाप अनि मनोरथ पूर्ण भएका भक्त बन्नेछौ ॥३७–४०॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! ती विरूपाक्ष नेमुनिको यस्तो कुरा सुनेर विधिपूर्वक नेमुनिको निर्देशनअनुसार ती तीर्थमा गएर स्नान गर्न थाले। उनले माघ कृष्ण चतुर्दशीको मघा नक्षत्रले युक्त भएको दिन आफ्नो इच्छा पूर्ण गरिदिने दुर्गातीर्थ नाम गरेको तीर्थमा स्नान गरे। नेमुनिको उपदेश अनुसार पञ्चोपचार विधिले उनले शिवमन्त्र उच्चारण गर्दै भक्तिपूर्वक आदिलिङ्गलाई पूजा गरे। रातिमा बत्ती बालेर रुद्रको मन्त्र जप्दै जागरण गरे, अनि उनले तीर्थ र लिङ्गको माहात्म्य नेमुनिसित सोधे ॥४१–४४॥

---

२०. तीर्थे च स्नायते इति न.सं.पु.पाठः।
२१. प्रपूजय इति न.सं.पु.पाठः।
२२. प्रदीपानि कृतजागरणेन च इति न.सं.पु.पाठः।
२३. समम् इति न.सं.पु.पाठः।
२४. संयुते इति न.सं.पु.पाठः।

विरूपाक्ष उवाच

कर्तव्यं धीमता कर्म दानधर्मोपवासकम्। तेनैव सफलं कर्म श्रुतिभिरिति चोदितम्[२५] ॥४५॥
श्रोतव्यञ्च सतां वाक्यं सम्यगुक्तं हि धीमता। कर्तव्यं निश्चितं[२६] तस्माच्छ्रोत्रा तद्धर्मकर्मणोः ॥४६॥
पूर्वञ्च श्रोतुकामोऽहं तत्तत्तीर्थप्रशंसनम्। तत्तल्लिङ्गस्य माहात्म्यं तत्त्वञ्चैव मुनीश्वर ॥४७॥
सुनद्यां केन पूर्वञ्च सुस्नातं विधिवन्मुने। किं फलं तेन संलब्धं स्नातकेन वदाशु मे ॥४८॥

सिद्धर्षिरुवाच

स्नातव्यमेकचित्तेन द्वन्द्वभावं विसृज्य च[२७]। गङ्गाभावेन तीर्थेऽस्मिन्सफलं तस्य कर्म च ॥४९॥
आजन्म स्वकृतैः पापैः समहापातकादिभिः। मुच्यते तत्क्षणादेव चैतत्तीर्थजलाप्लवात् ॥५०॥
पूर्वजन्मकृतैः पापैर्मुच्यते तत्क्षणात्तथा। लिङ्गप्रदर्शनात्सर्वो भुक्तिं मुक्तिं लभेत वै[२८] ॥५१॥
देव्याः स्वेदोद्भवायाश्च लीलावत्याश्च सङ्गमे। स्नानतः सर्ववाञ्छादं दुर्गातीर्थमुदाहृतम् ॥५२॥
यं यञ्च काङ्क्षितं कामं स्नात्वा तत्राऽऽशु भक्तितः। लब्धं लोकैः सुखं तत्तद्[२९] देव्याः प्रसादतो द्विज ॥५३॥
देवैः स्नातं पुरा तस्मिन् युद्धे जयाप्तये भृशम्[३०]। दैत्यैः सदार्चितं लिङ्गं निजे जयमहोत्सवे[३१] ॥५४॥
दानवैश्च तथा भूयः स्वात्मनो विजयोत्सवे[३२]। दुर्गातीर्थे मुदा स्नात्वा चाऽऽदिलिङ्गं प्रपूजितम् ॥५५॥
लब्धवराश्च ते तस्माद्युयुधुश्च परस्परम्। देव्याः खड्गप्रपूताङ्गैर्लब्धं दैत्यैः परं पदम् ॥५६॥
देवा निष्कण्टकं राज्यञ्चक्रुः स्वर्गे चिरं मुदा। देव्या हतेषु दैत्येषु शक्रमुखा भृशं द्विज ॥५७॥

---

विरूपाक्षले भने – बुद्धिमान्ले दान, धर्म, उपवास आदि कर्म गर्नुपर्छ, त्यसैबाट कर्म सफल हुन्छ भनेर श्रुतिहरूले भनेका छन्। विद्वान्हरूले र सज्जनहरूले भनेको कुरालाई सुन्नुपर्छ र त्यसपछि तदनुसार धर्म, कर्म गर्नुपर्छ। हे मुनीश्वर ! पहिले म ती-ती तीर्थको माहात्म्य सुन्न चाहन्छु, त्यसपछि यो लिङ्गको माहात्म्य र तत्त्व सुन्दछु। यस उत्तम तीर्थमा कसले विधिपूर्वक स्नान गर्‍यो र त्यसले के फल पायो ? मलाई बताउनुहोस् ।४५-४८॥

सिद्धऋषिले भने – यस तीर्थमा गङ्गाको भाव गरेर द्वन्द्वलाई छोडी एकचित्त भएर स्नान गर्नुपर्छ। त्यसका सबै कर्म सफल हुन्छन्। यस तीर्थमा स्नान गर्नाले जन्मभर आफूले गरेका महापातकहरू र सामान्य पापबाट तुरुन्त नै मानिस मुक्त हुन्छ। लिङ्गको स्पर्श गर्नाले सबै प्राणीहरू पूर्वजन्ममा गरेका पापहरूबाट तुरुन्त मुक्त हुन्छन्, भुक्ति, मुक्ति र मनोकामनालाई प्राप्त गर्न सक्दछन्। देवीको पसिनाबाट पैदा भएको कौशिकी नदी र लीलावतीको सङ्गममा स्नान गर्नाले मात्र पनि सकल मोरथ पूरा गर्ने दुर्गातीर्थ रहेको छ ॥४९-५२॥

हे ब्राह्मण ! जुन जुन कामना गरेर मानिसले त्यहाँ भक्तिपूर्वक स्नान गरे, तिनीहरूले देवीको अनुग्रहद्वारा त्यो त्यो कामना पूर्ण गरेका छन्। त्यो तीर्थमा पहिले देवताहरूले दैत्यहरूसित ठूलो युद्ध गर्ने वर प्राप्तिका लागि स्नान गरे र आफ्नो विजयको आकाङ्क्षा राखेर लिङ्गको पूजा गरे। फेरि दानवहरूले पनि आफ्नो विजय प्राप्तिका लागि दुर्गातीर्थमा स्नान गरेर आदिलिङ्गको अर्चना गरे। वर पाएका देवता र दानवहरूले परस्पर युद्ध गरे। देवीका खड्गको प्रहारले पवित्र अङ्ग भएका दैत्यहरू परमपदमा पुगे। हे ब्राह्मण ! देवीले दैत्यहरूमाथि प्रहार गरेपछि इन्द्र आदि गरिएका देवताहरूले स्वर्गमा धेरै समयसम्म आनन्दसित निष्कण्टक राज्य गरे ॥५३-५७॥

---

२५. कीर्तितम् इति न.सं.पु.पाठः।
२६. कर्तव्यं निश्चितम् इति न.सं.पु.पाठः।
२७. विसर्जयन् इति न.सं.पु.पाठः।
२८. भुक्तिमुक्तिस्पृहां लभेत् इति न.सं.पु.पाठः।
२९. तन्तम् इति न.सं.पु.पाठः।
३०. योद्धुं वराप्तये भृशम् इति न.सं.पु.पाठः।
३१. स्वकीयजयमुत्सवैः इति न.सं.पु.पाठः।
३२. जयमुत्सवैः इति न.सं.पु.पाठः।

सिद्धर्षयोऽमराश्चैव पिशाचोरगराक्षसाः । स्नात्वा ह्यपूजयन् लिङ्गं भक्तिपूर्वं सनातनम् ॥५८॥
अवापुस्ते सुसिद्धिं वै स्नात्वा च[33] कौशिकीजले । आदिलिङ्गं प्रपूज्याऽऽशु सम्पूर्णसिद्धमानसाः ॥५९॥
शैलान् स्रष्टुं रहो ब्रह्मा दध्यौ पुरात्र शङ्करम् । ततः समुद्भवं लिङ्गमादिलिङ्गमुदाहृतम् ॥६०॥
कश्चित् विप्रो विमुक्तः प्रागत्रैव हि शृणु द्विज । अन्तर्वेद्यां समुद्भूतो भ्रष्टो नाम द्विजाधमः ॥६१॥
पञ्चभिः पातकैर्ग्रस्तः पूर्वजन्मविपाकतः । स्त्रीनरद्विजगोबालहिंसाभिरभवज्जुकः ॥६२॥
अत्रैव च महत्तीर्थं दुर्गाख्यं सुफलप्रदम् । दैवादपि समागत्य चाऽपश्यद् भक्तिवर्जितः ॥६३॥
चौरवृत्तिं समासाद्य चाऽस्पृशल्लिङ्गमुत्तमम् । तल्लिङ्गाक्तविभूतिञ्चाऽलेपयत् स[34] ललाटके ॥६४॥
एतत्तीर्थजलं पूर्वं तन्नैवेद्यमशन् पपौ । ततो भ्रष्टस्तटे तस्थौ तन्निशायां हिमार्दितः ॥६५॥
फाल्गुनस्यासिते पक्षे चाऽमावास्यामहानिशि । पञ्चत्वं प्राप्तवान् भ्रष्टस्ततपूर्वमस्पृशच्छिवम् ॥६६॥
ततश्च शिवदूतास्तं[35] यानेन लोकमैश्वरम् । निन्युस्ततो द्विजो भ्रष्टो रुद्रस्यानुचरोऽभवत् ॥६७॥
तस्मादपि च धीमद्भिश्चतुर्दश्यां महातिथौ । स्नानञ्च प्रथमं कार्यमर्चनीयः ततः शिवः[36] ॥६८॥
सर्वपर्वसु यत्नेन स्नातव्यं विधिवद् बुधैः । हव्यकव्यार्चनन्तत्र चाऽन्यत्कोटिगुणं फलम् ॥६९॥
कुष्ठी स्नात्वाऽऽदिलिङ्गं यो भक्त्या प्रेक्ष्य प्रपूजति । कुष्ठजन्म परित्यज्य रुद्रलोके वसेत्सुखम् ॥७०॥
एतद्धि तुभ्यं कथितं महत्त्वमाद्याख्यलिङ्गस्य तथा च नद्योः ।
तीर्थं हि योगे सुफलप्रदं वै भीमेश्वरो यत्र विरूप गच्छ ॥७१॥

इति श्रीस्कन्दपुराणे हिमवतखण्डे विरूपाक्षतीर्थयात्रायां दुर्गातीर्थादिलिङ्गयोर्माहात्म्यं नाम नवतितमोऽध्यायः ॥९०॥

---

सिद्धऋषिहरू, देवताहरू, पिशाचहरू, सर्पहरू तथा राक्षसहरूले स्नान गरेर सनातन रूपमा रहेको यस लिङ्गको भक्तिपूर्वक पूजा गरे। कौशिकी नदीको जलमा स्नान गर्ने सिद्धहरूले आदिलिङ्गको पूजा गरेर तुरुन्त सिद्धि प्राप्त गरे। अघि ब्रह्माले पहाडहरूको सृजना गर्नका लागि एकान्तमा भगवान् शङ्करको ध्यान गर्नुभएको थियो। त्यसैबाट पैदा भएको हुँदा यस लिङ्गलाई आदिलिङ्ग भनिएको हो। हे ब्राह्मण ! अन्तर्वेदी भन्ने ठाउँमा जन्मिएको अधम, भ्रष्ट नाम गरेको कुनै ब्राह्मण यसै ठाउँमा मुक्त भएको थियो, सुन ॥५८-६१॥

पूर्वजन्ममा स्त्रीहत्या, नरहत्या, द्विजहत्या, गोहत्या र बालहत्या जस्ता अपराध गरेका कारण पाँचवटा पापले ग्रस्त भयो। त्यसै ठाउँमा दुर्गा नाम गरेको पुण्यदायी तीर्थ छ। दैवसंयोगले त्यहाँ आएर त्यसले भक्ति नै नभईकन पनि त्यस तीर्थको दर्शन गऱ्यो। चोर्ने नियतले त्यसले त्यो उत्तम लिङ्गलाई स्पर्श गऱ्यो। त्यस लिङ्गमा लागेको विभूति निधारमा दाँसियो। त्यहाँको नैवेद्य खाएर उसले यो तीर्थको जल पियो। त्यसपछि त्यो भ्रष्ट हिउँले पीडित भएर रातभरि त्यसै नदीको तटमा बस्यो। फागुन महिनाको कृष्णपक्ष अमावास्याको राती त्यो भ्रष्ट त्यसै ठाउँमा मऱ्यो। त्यसभन्दा पहिले उसले शिवजीलाई छोएको थिएन ॥६२-६६॥

त्यसपछि शिवजीका दूतहरूले यानद्वारा उसलाई शिवलोक लगे। त्यसै समयदेखि त्यो भ्रष्ट ब्राह्मण शिवजीको अनुचर भयो। त्यसैले बुद्धि भएका मानिसहरूले चतुर्दशीको महातिथिमा यस ठाउँमा पहिले स्नान गर्नुपर्छ र त्यसपछि शिवजीको पूजा गर्नुपर्छ। सबै पर्वमा विद्वान्हरूले यहाँ आएर स्नान गर्नुपर्छ। हव्य, कव्य तथा पूजा गर्नुपर्छ। त्यसो गऱ्यो भने अन्य तीर्थमा भन्दा करोडौं गुणा बढी फल प्राप्त हुन्छ। कुष्ठरोग लागेको कुनै व्यक्तिले आदिलिङ्गको भक्तिपूर्वक दर्शन गरेर पूजा गऱ्यो भने कुष्ठजन्मलाई छोडेर त्यो रुद्रलोकमा सुखपूर्वक बस्न पाउँछ। हे विरूपाक्ष ! तिमीलाई मैले आदिलिङ्ग र दुई नदीको माहात्म्य बताएँ। ती दुई नदीको सङ्गम तीर्थमा सम्पूर्ण फल दिने भीमेश्वर महादेव बस्नुभएको छ, त्यहाँ जाऊ ॥६७-७१॥

पराम्बा वाग्वादिनी भगवतीको असीम अनुकम्पाबाट पोरकनी पाल्पा निवासी पतिव्रताशिरोमणि स्वर्गीय माताश्री दिव्यलक्ष्मी ढकाल र सज्जनमुकुटमणि स्वर्गीय पिताश्री चूडामणि ढकालका कनिष्ठ पुत्र नेपाल संस्कृत विश्वविद्यालय सेवा आयोगका अध्यक्ष प्रा. डा. वेणीमाधव ढकालद्वारा नरहरिनामक भाषानुवादसहित सम्पादित हिमवत्खण्डको चौसट्ठीलिङ्ग प्रकरणमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा दुर्गातीर्थ र आदिलिङ्गको माहात्म्यनामक नब्बेऔं पूरा भयो।

---

३३. स्नातकाः इति न.सं.पु.पाठः।
३४. विभूत्या च आलेपि तत् इति न.सं.पु.पाठः।
३५. शिवदूतैः सः इति न.सं.पु.पाठः।
३६. कार्यमर्चनीयं ततः शिवम् इति न.सं.पु.पाठः।

# एकनवतितमोऽध्यायः

भीमेश्वरतीर्थयात्रा तन्माहात्म्यञ्च

स्कन्द उवाच

दुर्गातीर्थे मुदा स्नात्वा प्रजहौ कुष्ठजं रुजम्। ततः कुष्ठाद्विमुक्तोऽसौ तद्व्रणैश्च घटोद्भव ॥१॥
वन्येन पारणां कृत्वा विरूपाक्षोऽगमत्पुनः। सिद्धर्षिभिः समं यत्र भीमेश्वरो विराजते ॥२॥
तस्माद्धि दिशि कौवेर्यां त्रियोजने घटोद्भव। ताम्रचूडाचलस्याधः नद्योः सुसङ्गमो बभौ ॥३॥
माघकृष्णस्य पूर्णायां देवतीर्थे यथाविधि। सस्नौ स कौशिकीनद्योः[1] सङ्गमे देवसेविते ॥४॥
स्नात्वाऽसौ विधिवल्लिङ्गं भक्त्याऽनर्च विरूपदृक्। दीपं दत्वा मुनिं रात्रौ चाऽपृच्छत्तत्प्रशंसनम् ॥५॥

विरूपाक्ष उवाच

मुनीश मुनिशार्दूल तीर्थतत्त्वविशारद। भवतीच्छा मदीया सा कर्तुं प्रश्नं[2] दयाकर ॥६॥
भीमेश्वर इति ख्यातो भवता तत्र मे विभो। तदुद्भवकथां पुण्यां मां श्रावय[3] मुनीश्वर ॥७॥
फलं प्रलभ्यते येन श्रोतव्यं प्राक् च भक्तितः। भीमेश्वरस्य तीर्थस्य माहात्म्यं वद मेऽधुना ॥८॥

नेमुनिरुवाच

शुम्भासुरभयाद् देवाश्चाऽत्रैव हि प्रदुद्रुवुः। कौशिक्योश्च[4] द्वयोर्मध्ये सस्नुः श्रान्ताः पराजिताः ॥९॥
तस्माच्च देवतीर्थञ्च विख्यातं भुवि दुर्लभम्। स्नात्वा शतगुणं पुण्यं प्राप्नुयादन्यतः फलम्[5] ॥१०॥
ततश्चाऽऽवाहयन् रुद्रं देवास्त्रिभुवनेश्वरम्। भक्तिभिश्च स्तवैश्चाऽत्र दानवाद् भयविह्वलाः ॥११॥
तदोद्भूतमिदं लिङ्गं हरवक्त्रं भयङ्करम्। अव्यक्तं सर्वलोकानां देवमध्ये विराजितम् ॥१२॥

---

## अध्याय - ९१

विरूपाक्षको भीमेश्वरतीर्थयात्रा र त्यसको माहात्म्य

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! त्यसपछि त्यो ब्राह्मण दुर्गातीर्थमा स्नान गरेर कुष्ठरोग र त्यसका खटिराबाट मुक्त भयो। सिद्धऋषिहरूका साथ जहाँ भीमेश्वर बस्नुभएको थियो, त्यसै ठाउँमा वनका कन्दमूलहरू पारायण गरेर विरूपाक्ष गए। त्यसै ठाउँको तीन योजन उत्तरपट्टि ताम्रचूड नाम गरेको पहाडको तलतिर दुईवटा नदीको सङ्गम छ। माघ कृष्ण पूर्ण भएको दिन दुईवटा कोशीको सङ्गमस्थल भएको, देवताद्वारा सेवित त्यस देवतीर्थमा ती ब्राह्मणले स्नान गरे। त्यसपछि ती विरूपाक्षले त्यहाँ विधिपूर्वक लिङ्गको सभक्ति पूजा गरे, रातमा बत्ती बाले, त्यस तीर्थको माहात्म्य ऋषिसँग सोधे ॥१-५॥

विरूपाक्षले भन्यो – तीर्थको तत्त्व जान्ने हे मुनिश्रेष्ठ ! दयाका खानी भएका हे मुनीश्वर ! म तपाईंसित प्रश्न गर्न चाहन्छु। भीमेश्वर नामले प्रसिद्ध तीर्थका बारेमा तपाईंले अघि भन्नुभएको थियो। त्यसको उत्पत्ति, त्यसको कथा र त्यो सुन्नाले पहिले जे जस्तो फल प्राप्त भयो, त्यो र भीमेश्वर तीर्थको माहात्म्य मलाई बताउनुहोस् ॥७-८॥

नेमुनिले भन्नुभयो – शुम्भ नाम गरेको दैत्यको डरले देवताहरू स्वर्ग छोडेर यसै दुई कोशीको बीचमा भागेर आएका थिए। त्यस समयदेखि पृथ्वीमा दुर्लभ भएको यो तीर्थ देवतीर्थको नामले प्रसिद्ध भयो। त्यहाँ स्नान गर्नाले अन्यत्रभन्दा सय गुणा बढी पुण्य प्राप्त हुन्छ। त्यसपछि राक्षसको डरले आत्तिएका देवताहरूले तीनै लोकका अधिपति रुद्रभगवान्को भक्तिपूर्वक स्तुति गरेर आवाहन गरे। त्यस अवसरमा सबै प्राणीहरूले नदेख्ने र देवताहरूको बीचमा रहेको शिवजीको मुखको आकार भएको डरलाग्दो लिङ्ग पैदा भयो ॥९-१२॥

---

१. सस्नौ कौशिकयोर्विप्रः इति न.सं.पु.पाठः।
२. भवतीच्छाम्यहं चात्र प्रश्नं त्वयि इति न.सं.पु.पाठः।
३. तस्यैव चोद्भवञ्चैव तत्कथञ्च इति न.सं.पु.पाठः।
४. कौशिकयोः इति न.सं.पु.पाठः।
५. संलभेदन्यतः फलम् इति न.सं.पु.पाठः।

आविर्भूतस्ततो लिङ्गात् त्रिभुवनेश्वरो द्विज । वरदानाय देवेभ्यो भीमरूपोऽभयप्रदः ॥१३॥
व्याजहार तदा तेभ्यो वचनं हितभाषितम् । भासयँश्च[६] दिशो भाभिर्दन्तानां व्यक्तरोचिषाम् ॥१४॥

भीमेश्वर उवाच

मा कुरुत भयं देवा दैत्येभ्यश्चैव शत्रुतः । प्रतीकारा भविष्यन्ति शृणुध्वं यच्च मद्वचः[७] ॥१५॥
जप्यन्तामत्र मन्त्रास्ते जयकामनया ध्रुवम्[८] । कौशिक्योः सङ्गमे चाऽत्र स्नात्वा दैत्यान् विनाशितुम् ॥१६॥
हनिष्यति ततो देवी दानवान् युद्धदुर्मदान् । एकाकिनी स्थिता शैले चेतोऽधो गिरिशेखरे[९] ॥१७॥
आगमिष्यन्ति चेत्तत्र भवदन्वेषणाय[१०] च । निधनत्वं गमिष्यन्ति मद्दृष्टिपातनात् पुनः ॥१८॥

नेमुनिरुवाच

भाषमाणे परे[११] भीमे देवैः सह मिथो द्विज । देवेभ्यो वरदे तीर्थे रुद्रं समस्तुवन् सुराः[१२] ॥१९॥
कालको नाम दैत्योऽसौ चाऽऽजगामाऽत्र सत्त्वरम् । दशकोटिरथैः सार्द्धं देवानन्वेषयन् भृशम् ॥२०॥
सिंहनादं भृशञ्चक्रुस्ते बाणवृष्टिना सह[१३] । अवमानं प्रकुर्वन्तो भीमेश्वरं सुरेषु ते ॥२१॥
ददृशुर्दानवान् देवाः सिंहनादैः समन्वितान् । समायातास्तदा योद्धुं बाणवृष्टिं प्रवृष्य च ।
भूयो भयान्विता देवा जग्मुस्तच्छरणं शिवम् ॥२२॥
पुरा व्याघ्राच्च सिद्धाद्रौ पशुपतिं मृगा इव । तुष्टुवुस्ते ततो देवा वचोभिर्भयगद्गदैः ॥२३॥

---

त्यसपछि त्यस लिङ्गबाट अभय दान दिने, डरलाग्दो रूप भएका, तीनै लोकका स्वामी शङ्कर भगवान् देवताहरूलाई वर दिन प्रकट हुनुभयो । त्यसपछि तेजिला दाँतका प्रकाशले दिशाहरूलाई उज्यालो तुल्याउँदै भगवान् शङ्करले देवताहरूलाई हितकारी वचन भन्नुभयो ॥१३-१४॥

भीमेश्वरले भन्नुभयो – हे देवता हो ! दैत्य शत्रुदेखि डर नमान, त्यसको प्रतीकार हुनेछ, मेरो कुरा तिमीहरू सुन । दैत्यहरूलाई नाश गर्नका निमित्त कौशिकी नदीको सङ्गममा स्नान गरेर विजयको चाहना राखी स्थिर भएर मन्त्र जप । त्यसपछि यसै स्थानभन्दा तल रहेको पहाडको शिखरमा एक्लै बस्नुहुने देवीले युद्धले मातेका राक्षसहरूलाई मार्नुहुनेछ । यदि तपाईंहरूलाई खोज्दै ती दैत्यहरू आए भने मेरो दृष्टिमा परेर ती सबै मर्नेछन् ॥१५-१८॥

नेमुनिले भन्नुभयो – हे ब्राह्मण ! यसरी भीमेश्वर महादेवले देवताहरूसित कुराकानी गरेपछि त्यसै वरदायक देवतीर्थमा उनीहरूले भगवान् शङ्करको स्तुति गरे ।त्यसपछि कालक नाम गरेको दैत्य दश करोड रथहरू लिएर देवताहरूलाई खोज्दै तुरुन्त त्यहाँ आइपुग्यो । ती दानवहरूले भीमेश्वर महादेव र देवताहरूको अपमान गरेर बाण वर्षाउँदै ठूलो सिंहनाद गरे । देवताहरूले सिंहनाद गर्दै बाण वर्षा गरेर लड्नका लागि सुरिएर आउन लागेका दानवहरूलाई देखे अनि डरले आत्तिएका देवताहरू भगवान् शिवको शरणमा गए । पहिले सिद्धपर्वतमा बाघदेखि डराएका मृगहरू जसरी पशुपतिको शरणमा गएका थिए, त्यसरी नै भयविह्वल भएका ती देवताहरू शिवजीको शरणमा गए र महादेवको प्रार्थना गर्न थाले ॥१९-२३॥

---

६. भाषयँश्च इति न.सं.पु.पाठः ।
७. वः शृणध्वञ्च मद्वचः इति न.सं.पु.पाठः ।
८. मन्त्राणि जयकामेन निश्चलम् इति न.सं.पु.पाठः ।
९. अस्मादधोऽद्रिशेखरे इति न.सं.पु.पाठः ।
१०. भवदन्वेषणेन इति न.सं.पु.पाठः ।
११. एवं संभाषणे इति न.सं.पु.पाठः ।
१२. पुनः इति न.सं.पु.पाठः ।
१३. वाणवृष्टिं प्रवर्षयन् इति न.सं.पु.पाठः ।

रक्ष रक्ष महादेव ! सङ्कटस्थान् स्वकिङ्करान्। अत्रोत्पन्नं भयं नश्च शत्रुतो दैत्यकिल्बिषात् ॥२४॥
नस्त्राहि रुद्र चैतस्मात्[१४] शत्रुसागरविप्लवात्। नमो रुद्राय देवाय देवानां पतये नमः ॥२५॥
शत्रुपापविनाशाय भक्तवत्सल ! ते नमः। इत्येतद्वचनं तेषां समाकर्ण्य महेश्वरः ॥२६॥
ददर्श दैत्यसैन्यञ्च हर्षोत्फुल्लविलोचनः। सम्प्रेक्ष्य दानवान् रुद्रः क्रोधेनैव मुमूर्च्छ च ॥२७॥
नादयन् स्यन्दनस्थान्[१५] तान् विबुधसैन्यविद्रवान्। रूपं दधार भीमं स सर्वलोकभयावहम् ॥२८॥
ततो देवासुरास्त्रस्ताः सम्प्रेक्ष्य भीमरूपिणम्। ततो ददर्श भीमोऽयं तृतीयेक्षणवह्निना ॥२९॥
दैत्यान् सन्दहतोन्मील्य वेगतो[१६] महदर्चिषा। दैत्यान् ददाह तद्वह्निर्हरनेत्रोद्भवोऽद्भुतः ॥३०॥
क्रोधोन्मीलेक्षणोद्भूतः प्रजज्वाल महच्छिखः। ज्येष्ठे मासे वने भूमौ दावो गुल्मं भृशं यथा ॥३१॥
चकार भस्मसाद्वह्निः सन्दह्य दानवान् द्विज। निहतेषु ततो देवा दैत्यसैन्येषु सर्वशः ॥३२॥
भीमेश्वरप्रसादात्ते जहुश्च तद्भयं तदा। कृत्वा च दण्डवद्देहान् हर्षप्रफुल्लमानसाः ॥३३॥
भीमेश्वरं प्रणेमुस्ते दूरतः सर्वतो दिशः। तं प्रेक्ष्य देवता भीमं प्रज्वलन्तं[१७] स्वतेजसा ॥३४॥
चेतोभिरन्तरे त्रस्ता रुषा भृशं भयावहम्। तुष्टुवुर्देवता भीमं वचोभिस्त्रिविधैस्ततः ॥३५॥
शनैःशनैरूपागत्य दिग्भ्यो भक्त्या समन्ततः। ॐ नमो भीमरूपाय भीमेश्वराय वै नमः ॥३६॥
दैत्येन्धनदाहकाय[१८] नेत्रोज्ज्वलाङ्गिने नमः। ॐ नमो रौद्ररूपाय रौद्रदेहाय ते नमः ॥३७॥
भयङ्कराय शत्रूणां रौद्रतेजोऽङ्गिने नमः। रक्ष रक्ष महादेव ! सदास्मान् शत्रुतो विभो ॥३८॥

---

हे महादेव ! सङ्कटमा परेका हामी सेवकहरूलाई रक्षा गर्नुहोस्, रक्षा गर्नुहोस्। पापी दैत्यशत्रुहरूबाट हामीलाई ठूलो डर उत्पन्न भएको छ। हे रुद्र ! शत्रुरूपी समुद्रको विपत्तिमा डुबेका हामीलाई यिनीहरूबाट रक्षा गर्नुहोस्। रुद्रदेवलाई नमस्कार छ। देवताका स्वामीलाई नमस्कार छ। हे भक्तवत्सल ! शत्रुरूपी पापलाई नाश गर्ने हजुरलाई नमस्कार छ ॥२४–२६॥

महादेवले देवताहरूको यो वचन सुनेर हर्षले ठूला-ठूला आँखा पार्दै दैत्यका सेनाहरूलाई हेर्नुभयो। दानवहरूलाई देखेर भगवान् रुद्र अत्यन्त क्रुद्ध हुनुभयो। त्यसपछि रुद्रले दानवलाई देखेर रथमा रहेका देवताका सैन्यलाई भगाउने ती दानवहरूका प्रति शब्द गर्नुभयो, रीसले क्रुद्ध भएर भगवान् रुद्रले डरलाग्दो रूप धारण गर्नुभयो। त्यो रूप देखेर देवता र दैत्यहरू डराए। त्यसपछि भीमेश्वरले ठूलो ज्वाला भएको तेस्रो आँखाको अग्निले दैत्यलाई हेर्नुभयो। शिवजीको आँखाबाट उत्पन्न भएको त्यो आश्चर्यजनक ठूलो अग्निले आफ्नो ज्वाला फैलाएर दैत्यहरूलाई डढायो। जसरी जेठ महिनामा वनमा लागेको डढेलोले रुख, लहरा आदिलाई डढाउँछ, त्यसरी नै शिवजीको क्रोधले गर्दा आँखाबाट पैदा भएको महाज्वालाले दानवहरूलाई डढायो ॥२७–३१॥

हे द्विज ! त्यसपछि सम्पूर्ण दानवहरूलाई अग्निले खरानी तुल्यायो, सबै दानवहरूका सेना मरेपछि देवताहरू भीमेश्वरको अनुग्रहबाट सर्वात्मना डरबाट मुक्त भए। उनीहरूले हर्षले विभोर भएर आफ्नो शरीरलाई दण्डआकार तुल्याएर टाढैबाट भीमेश्वरलाई चारै दिशातिर फर्किएर नमस्कार गरे। रीसले अत्यन्त डरलाग्दा भएका र आफ्नो तेजले बलिरहेका भीमेश्वर महादेवलाई देखेर भित्रभित्रै डराएका देवताहरूले बिस्तारै त्यहाँ आएर तीनै किसिमका भक्तियुक्त वचनको प्रयोग गर्दै सबै दिशाबाट स्तुति गरे ॥३२–३५½॥

भीमरूपलाई नमस्कार छ, भीमेश्वरलाई नमस्कार छ, दैत्यरूपी दाउरालाई डढाउने आँखाबाट निस्किएको अग्निले गर्दा उज्यालो अङ्ग भएका ईश्वरलाई नमस्कार छ। रौद्ररूपलाई नमस्कार छ, डरलाग्दो शरीर लिने हजुरलाई नमस्कार छ। शत्रुलाई भय पैदा गर्ने रौद्र तेजयुक्त शरीर भएका ईश्वरलाई नमस्कार छ। हे महादेव ! हे विभु ! शुम्भ आदि समुद्रको तरङ्गजस्तै डरलाग्दो भएका राक्षस शत्रुहरूदेखि हामीलाई रक्षा गर्नुहोस् ॥३६–३८½॥

---

१४. त्राहि रुद्र ! न एतेभ्यः इति न.सं.पु.पाठः।
१५. नादयं स्तान् रथस्थान् इति न.सं.पु.पाठः।
१६. प्रज्वलमानेन प्रोन्मील्य इति न.सं.पु.पाठः।
१७. ज्वलमानम् इति न.सं.पु.पाठः।
१८. दैत्येन्धनप्रदग्धाय इति न.सं.पु.पाठः।

शुम्भमुखाऽसुराम्भोधिमहाकल्लोलभीषणात्[१९] ।

भीमेश्वर उवाच

मा मा सुरा बिभीयन्तामत्र शुम्भासुराद् ध्रुवम् ॥३९॥
यूयं भीमं यतः प्राप्तास्त्यज्यन्तां तद्भयानि च । अद्य विलयमेष्यन्ति दानवा बलदर्पिताः ॥४०॥
देव्याः खड्गाग्निना दग्धा गमिष्यन्ति रसातले[२०] । प्राप्तव्यं तेन चावश्यं तपःफलं पुराकृतम् ॥४१॥
फलात्तत्तपसस्तस्य चाद्यैव वित्थ भो सुराः । देव्या हतेऽधुना शुम्भे ससैन्ये युधि चात्र वै ॥४२॥
रसातले गते यूयं भुञ्जीध्वं त्रिदिवं सुखम् ।

नेमुनिरुवाच

इत्युक्त्वान्तर्दधे लिङ्गे भीमेश्वरस्तदा द्विज ॥४३॥
दर्शयन् स्वं सुरांस्तत्र चाविर्भूतो यतः पुरा । देवाश्च प्रययुः स्वर्गञ्चक्रू राज्यं सुखं मुदा ॥४४॥
देव्या हतेऽसुरे शुम्भे ससैन्ये च रसाङ्गते । एवं बहुविधा लोका विमुक्ताश्चात्र सङ्कटात् ॥४५॥
एतल्लिङ्गं पुरा ज्ञात्वा भक्त्यार्चनैः स्तवैस्तथा । शृणु विप्र ! माहात्म्यञ्च देवतीर्थस्य साम्प्रतम् ॥४६॥
मुक्तः कश्चिन्नरः पूर्वं तद् वृत्तान्तं हि चात्र भोः । आसीत् कश्चिद् द्विजः श्राद्धं शान्ते पितरि भक्तितः ॥४७॥
कृत्वा च बहुवारं स भोजनं कृतवान् पुनः । बहुधाशनदोषेण कौलयोनावजायत[२१] ॥४८॥
शूकरोऽभूदसौ विप्रः शैलकन्दरवासकृत्[२२] ।

---

भीमेश्वरले भन्नुभयो – हे देवता हो ! शुम्भ राक्षसदेखि नडराओ, किनभने तिमीहरूले भीमेश्वरलाई प्राप्त गरेका छौ । त्यसैले त्यो सबै डर तिमीहरू छोड । आज नै बलले मातेका दैत्यहरू देवीको तरवारको आगाले डढेर रसातलमा जानेछन्, यसमा शङ्का छैन । पहिले उसले गरेको तपस्याको फल पाउनु थियो, पायो । त्यस तपस्याको फल आज नै समाप्त भयो भन्ने कुरा हे देवता हो ! तिमीहरू बुझ । अब देवीले सेनाले सहित भएको शुम्भ दैत्यलाई पृथ्वीमा भएको युद्धमा मार्नुभयो । अब तिमीहरू स्वर्गमा गएर सुखभोग गर ॥३९-४२॥

नेमुनिले भन्नुभयो – हे ब्राह्मण ! यति भनेर भीमेश्वर महादेवले आफ्नो स्वरूप देवताहरूलाई देखाउँदै जहाँबाट पैदा हुनुभएको थियो, त्यसै लिङ्गमा अन्तर्धान हुनुभयो । देवीले सेनासहित भएको शुम्भ दैत्यलाई मारेर पृथ्वीतिर लागेपछि देवताहरू स्वर्ग गए र सुखपूर्वक राज्य गर्न थाले । अघि यसरी धेरैथरी प्राणीहरू यस लिङ्गको महत्त्व बुझी भक्तिपूर्वक पूजा र स्तुति गरेर सङ्कटबाट मुक्त भएका थिए । हे ब्राह्मण ! अब देवतीर्थको माहात्म्य सुन– कुनै मानिस यहाँ अघि मुक्त भएको थियो, त्यो वृत्तान्त पनि सुन । कुनै बाहुनले बाबु मरेपछि यहाँ आएर धेरैपटक श्राद्ध गरी बारम्बार भोजन गर्‍यो । धेरै खाएको दोषले गर्दा यो बाहुन वनेलको योनिमा पैदा भएर सुँगुर भयो र पहाडका गुफामा बस्न थाल्यो ॥४३-४८½॥

---

१९. शुम्भमुखासुरेणाब्धिमहत्कल्लोलभीषणात् इति न.सं.पु.पाठः ।
२०. दग्धाङ्गा रसारले न संशयः इति न.सं.पु.पाठः ।
२१. कोलयोनिसमुद्भवः इति न.सं.पु.पाठः ।
२२. शैलगुहाप्रसेवितः इति न.सं.पु.पाठः ।

भ्रमन्नित्यं पिपासार्तः क्षुधापीडितविग्रहः ॥४९॥
दैवयोगेन कोलोऽसौ दर्भशैलं समागमत्। म्लेच्छो ददर्श कश्चित्तं दर्भवदद्रिशेखरे ॥५०॥
वृक्षमूलमुत्खनन्तं भक्षयन्तं फलानि च। सशरञ्च धनुर्धृत्वा चाभिदुद्राव शूकरम् ॥५१॥
निचखान शरं म्लेच्छः कोलपृष्ठे भृशं द्विज ॥५२॥
लक्ष्यीकृत्याऽऽशु तं म्लेच्छस्तन्मांसाशनलालसः। कोलोऽपि तमभिप्रेक्ष्य दुद्राव गिरिशेखरात्।
अभिदुद्राव तं लुब्धः कोलो यत्र गतो[२३] द्रुतम् ॥५३॥
भूयो हन्तुमियेषाऽसौ तद्व्रणेनाप्यलोडितम्। जलं पातुं पिपासार्त्तः शूकरोऽसौ व्रणाङ्कितः ॥५४॥
जलमुद्दिश्य दुद्राव शरपीडां च तां[२४] सहन्। देवतीर्थन्ततः प्राप्य चापिबत्तज्जलं सुखम् ॥५५॥
शूकरोऽपि च तत्तीर्थे व्रणश्रमेण पीडितः। पञ्चत्वं प्राप्तवान् कोलो देवतीर्थजलं पिबन् ॥५६॥
तत्तटे प्रवसन्भीतः शरक्षतप्रपीडितः। तत्तीर्थजलपानेन तत्तटे निधनात्पुनः ॥५७॥
श्रोत्रियस्य कुले जातो द्विजोऽसौ वेदपारगः। विरक्तोऽभूद् द्विजोऽसौ च दैवयोगात्पुनर्द्विज ॥५८॥
अत्रागमत्स चैकाकी भ्रान्त्वा[२५] तीर्थानि भूरिशः। विप्रोऽसौ निर्जनः सस्नौ निधनादत्र पुण्यतः ॥५९॥
कोलजन्मा पुरा भूयो देवतीर्थजलं स्पृशन्[२६]। माघकृष्णचतुर्दश्यां शिवभक्तो द्विजोत्तमः ॥६०॥
एतत्तीर्थे मुदा स्नात्वा लिङ्गान्तिकं तदागमत्। श्रद्धधानोऽत्र स स्नात्वा[२७] चैतल्लिङ्गमपूजयत् ॥६१॥
भक्त्या स्तवैश्च मन्त्रैश्च रुद्रशर्मा मुदाऽन्वितः। ददौ वरं शिवस्तस्मै दिव्यरूपं त्रिलोचनम् ॥६२॥
त्रिशूलं डमरुं श्रेष्ठं गणत्वञ्च वरस्रजम्[२८]।

---

घुम्दाघुम्दै तिर्खा र भोकले पीडित भएको त्यो सुँगुर दैवसंयोगले गर्दा कुशैकुश भएको पहाडमा पुग्यो। त्यो कुश भएको पहाडको शिखरमा रुखको जरै उखेलेर फल खान थालेको सुँगुरलाई कुनै म्लेच्छले देख्यो। त्यसपछि त्यो सुँगुरको मासु खान लोभिएको म्लेच्छ बाणसहित भएको धनुषलाई धारण गरी सुँगुरतिर दौडियो र त्यस म्लेच्छले सुँगुरको पिठ्यूँमा कसेर बाण हान्यो। त्यो देखेर सुँगुर पनि पहाडको शिखरबाट दौडियो। त्यो व्याधा जता-जता सुँगुर गयो, त्यतै-त्यतै खूबसित दौडियो। रक्ताम्य भएको त्यस सुँगुरलाई मार्ने इच्छा गऱ्यो ॥४९-५३½॥

तिर्खा र घाउले आत्तिएको त्यो सुँगुर पानी पिउनका लागि बाणबाट भएको पीडालाई सहँदै पानी भएतिर दौडियो। घाउ र परिश्रमले पीडित भएको त्यो सुँगुरले देवतीर्थमा पुगेर त्यहाँको पानी आनन्दसित पियो। बाणबाट लागेको घाउले पीडित भएको र डराएको त्यो सुँगुर देवतीर्थको पानी पिएर त्यसको तीरमा बस्दा-बस्दै मऱ्यो। त्यो तीर्थको पानी पिएर त्यसै तीरको तटमा मरेको हुँदा त्यो सुँगुर वैदिक ब्राह्मणको कुलमा जन्मियो र वेदमा पारङ्गत भयो ॥५४-५७½॥

हे ब्राह्मण ! त्यसपछि त्यो बाहुन विरक्त भयो, दैवसंयोगले अनेकौं तीर्थ घुम्दै एक्लै त्यो यसै ठाउँमा आइपुग्यो। त्यस बाहुनले एक्लै त्यस ठाउँमा आएर स्नान गऱ्यो। पहिले बँदेलजन्ममा प्राप्त भएको त्यो ब्राह्मण माघ महिनाको कृष्णपक्षको चतुर्दशीका दिन देवतीर्थको जल स्पर्श गरेको हुँदा शिवभक्त भयो। त्यस तीर्थमा आनन्दसित स्नान गरेर त्यो लिङ्गको नजिकै गयो र भक्तिपूर्वक स्तुति र मन्त्रको उच्चारण गर्दै रुद्रशर्माले त्यस लिङ्गलाई प्रसन्न भएर पूजा गऱ्यो। त्यसलाई शिवजीले दिव्य स्वरूप, तीन वटा आँखा, त्रिशूल, डमरु, उत्तम माला र गणेश्वरको पदवी दिनुभयो ॥५८-६२½॥

---

२३. कोलं यत्र गतम् इति न.सं.पु.पाठः।
२४. तथा इति न.सं.पु.पाठः।
२५. भ्राम्य इति न.सं.पु.पाठः।
२६. देवतीर्थजलस्पृशात् इति न.सं.पु.पाठः।
२७. स्नायी इति न.सं.पु.पाठः।
२८. वरस्रजं गणेश्वरम् इति न.सं.पु.पाठः।

ततश्च शिवदूतास्ते[२९] व्योम्नः शिवानुशासनात् ॥६३॥
सर्वोपकरणं शैवं यानमत्र समानयन्। आदध्यू रुद्रशर्माणं तद्याने शिवदूतकाः ॥६४॥
सम्मानमादरं चक्रुर्द्वितीय[३०] शङ्करं यथा। व्योम्नि दुन्दुभयो नेदुर्नानावाद्यैः समं तदा ॥६५॥
ववृषुः[३१] कुसुमासारा देवकन्याकरेरिताः। आसीन्नादस्तदा व्योम्नि धन्येति साधु साध्विति ॥६६॥
शूलिनं त्रीक्षणं प्रेक्ष्य डमरुमुण्डधारिणम्। ततोऽनयँश्च यानस्थं ते दूताः शिवमन्दिरम् ॥६७॥
गीतवाद्यमहोल्लासै रुद्रकन्याभिसेवितम्। स एव प्रमथश्रेष्ठस्तद्दिनादभवद् द्विज ॥६८॥
रुद्रस्यानुचरः शूली यदृच्छयागमत्सदा। देवतीर्थस्य माहात्म्यं भीमेश्वरस्य भक्तिवित् ॥६९॥
दुर्लभं भुवि जानीहि चेदृशमसतां सदा। स्नात्वा चात्रैव यः कश्चिदेतल्लिङ्गं प्रपूजति ॥७०॥
एतल्लोकं[३२] समुत्सृज्य शिवलोकं स गच्छति ॥७१॥

भूयो व्रज त्वं हि मया च सार्द्धं दिशि प्रतीच्याञ्च त्रियोजनान्ते।
काफीश्वरो यत्र विराजतेऽतः सुवर्णतीर्थेन समं हि नित्यम् ॥७२॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां भीमेश्वरदेवतीर्थयोर्माहात्म्यं नाम एकनवतितमोऽध्यायः ॥९१॥

---

त्यसपछि शिवको आज्ञा अनुसार शिवका दूतहरूले आकाशबाट यस ठाउँमा सम्पूर्ण सुविधाले युक्त भएको शिवको यान लिएर आए। शिवदूतले रुद्रशर्मालाई बडो सम्मानका साथ आदर गर्दै दोस्रा शङ्कर नै हुन् कि भने झैँ गरी यानमा बसाले। त्यसबेला आकाशमा विभिन्न बाजाहरूका साथ दमाहा बजे। देवताका कन्याहरूको हातबाट खसेका फूलका वर्षाहरू बर्सिए। त्रिशूल लिएका, तीन आँखा भएका, डमरु र मुण्डमाला धारण गर्ने ती ब्राह्मणलाई देखेर आकाशमा धन्य, साधु साधु जस्ता आवाजहरू आउन थाले ॥६३-६६॥

गाना, बजाना र ठूलो उत्सव गरेर रुद्रका कन्याहरूले सुसेवित विमानमा अवस्थित त्यस ब्राह्मणलाई शिवदूतहरूले शिवजीको मन्दिरमा लगे। हे ब्राह्मण ! त्यसै दिनदेखि त्यो ब्राह्मण अकस्मात् सदाका लागि शिवजीका गणहरूमा श्रेष्ठ त्रिशूलधारी अनुचर भयो र आफ्नो इच्छानुसार अन्य तीर्थतर्फ लाग्यो। हे भक्तिज्ञ ! देवतीर्थ र भीमेश्वर महादेवको यस्तो माहात्म्य पृथ्वीमा दुष्टका लागि सधैँ दुर्लभ छ भनेर जान। यस तीर्थमा स्नान गरेर जसले यस लिङ्गको पूजा गर्छ, त्यो व्यक्ति यस संसारलाई छोडेपछि शिवलोक जान्छ ॥६७-७०॥

त्यसपछि तिमी मसितै हिँड, त्यसको पश्चिमतिर तीन योजन पर काफीश्वर महादेव सुवर्णतीर्थका साथै सधैँ विराजमान हुनुहुन्छ ॥७१॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा भीमेश्वर र देवतीर्थको माहात्म्यनामक एकान्नब्बेऔँ अध्याय पूरा भयो।

---

२९. शिवदूताश्च इति न.सं.पु.पाठः।
३०. आद्रियन् बहुमान्यैश्च द्वितीयम् इति न.सं.पु.पाठः।
३१. ववर्षुः इति न.सं.पु.पाठः।
३२. इहलोकम् इति न.सं.पु.पाठः।

# द्विनवतितमोऽध्यायः

## काफीश्वरशिवलिङ्गसुवर्णतीर्थयोर्महिमा

### स्कन्द उवाच

देवतीर्थे ततः स्नात्वा कुष्ठव्रणैर्विमुक्तवान्। अभूद्धि बलवान् किञ्चिद्विरूपाक्षो घटोद्भव ॥१॥
भूयो जगाम विप्रोऽसौ याम्यायां दिशि भक्तिमान्[1]। मुनिना सह भक्त्या वै यत्र काफीश्वरो विभुः ॥२॥
माघकृष्णद्वितीयायां सुवर्णतीर्थमाव्रजत्। सस्नौ विप्रो हि तत्तीर्थे भक्त्याऽभ्यर्च्य सुसङ्गमे ॥३॥
तस्मिन्तीर्थे मुदा स्नात्वा भक्त्या पञ्चोपचारकैः। आनर्च विधिवल्लिङ्गं काफीश्वरं प्रमाणतः ॥४॥
सम्पूज्य तन्निशायां स तीर्थस्नायी च तत्त्वतः। महिमानमपृच्छत्त[2] तत्तीर्थलिङ्गयोर्मुनिम् ॥५॥

### विरूपाक्ष उवाच

मुने मयात्र संस्नातं स्वर्णतीर्थेऽधुना विभो। त्वत्प्रसादाद्यथाशक्ति चैतल्लिङ्गं हि पूजितम् ॥६॥
सुवर्णीर्थमाहात्म्यं काफीश्वरप्रभोरपि। गौरवं श्रोतुमिच्छामि सिद्धर्षे ! करुणां कुरु[3] ॥७॥
उद्भूतञ्च कथं लिङ्गं नद्याश्चैव तथा पुनः। केन प्रकाशितं लिङ्गं को मुक्तोऽत्र वद प्रभो ॥८॥

### सिद्धर्षिरुवाच

पूर्वजन्मविपाकेन कफरोगी ह्यभूद् द्विजः। तस्मात्कफीति विख्यातो नित्यकर्मविलङ्घनात् ॥९॥
धर्मकर्मरतो नित्यं कफी योगीश्वरः सदा। तस्य पुत्रो मुनिश्रेष्ठः काफीति भुवि विश्रुतः ॥१०॥
दानधर्मरतो नित्यं सर्वविद्याविशारदः। तीर्थस्नायी सुयोगीशो ह्यभूत्काफी मुनीश्वरः ॥११॥
भ्रामं भ्रामं[4] क्षितिं सर्वां तीर्थानि प्रतिमां पुनः। हिमवन्तं समागत्य निर्जनत्वं स लब्धवान्[5] ॥१२॥

---

## अध्याय – ९२

### काफीश्वर शिवलिङ्ग र सुवर्णतीर्थको महिमा

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! देवतीर्थमा स्नान गरी ती ब्राह्मण विरूपाक्ष कुष्ठरोगजन्य घाउबाट मुक्त भई र केही बलिया भए ॥१॥ त्यसपछि मुनिलाई साथमै लिएर जहाँ काफीश्वर भगवान् बस्नुहुन्थ्यो, ज्यादै दक्षिणतिर रहेको त्यसै ठाउँमा विरूपाक्ष गए ॥२॥ माघ कृष्ण द्वितीया तिथिका दिन ती ब्राह्मण सुवर्णतीर्थमा पुगे। त्यहाँ पुगेर ती ब्राह्मणले सुन्दर सङ्गम भएको तीर्थलाई भक्तिपूर्वक पूजा गरेर स्नान गरे ॥३॥ त्यस तीर्थमा आनन्दसित स्नान गरेर उनले नमस्कार गर्दै काफीश्वर भगवान्को लिङ्गलाई विधिपूर्वक पञ्चोपचारद्वारा पूजा गरे ॥४॥ उनले तीर्थमा स्नान गरेर साँझ परेपछि मुनिलाई सत्कार गरे अनि त्यस तीर्थको र लिङ्गको माहात्म्य सोधे ॥५॥

विरूपाक्षले भने – हे मुनि ! हजुरको अनुग्रहले गर्दा मैले अहिले यस तीर्थमा स्नान गर्ने मौका पाएँ र शक्ति अनुसार यस लिङ्गको पूजा गरेँ ॥६॥ हे तात ! म काफीश्वर नामले प्रसिद्ध भएको यस लिङ्गको र विशेष गरी यस तीर्थको माहात्म्य सुन्न चाहन्छु ॥७॥ हे प्रभो ! यो लिङ्ग र नदीको उत्पत्ति कसरी भयो ? कसले यस लिङ्गलाई प्रकाशित गर्‍यो ? यस लिङ्गको आराधनाबाट को मुक्त भयो ? मलाई बताउनुहोस् ॥८॥

सिद्धर्षिले भने – पूर्वजन्मका कुकृत्यले गर्दा कुनै बाहुन कफका रोगी भए, आफ्नो नित्य कर्म छोडेका हुँदा तिनी कफी नामले संसारमा प्रसिद्ध भए ॥९॥ सधैँ धर्मकर्ममा संलग्न योगीहरूका स्वामी कफीका छोरा काफी नामले संसारमा प्रसिद्ध भए ॥१०॥ काफी सधैँ दान र धर्ममा संलग्न हुन्थे। सम्पूर्ण विद्या जानेका थिए। तीर्थमा स्नान गर्थे। मुनीश्वर काफी योगीमा उत्कृष्ट थिए ॥११॥ सम्पूर्ण तीर्थ र देवताको मूर्ति भएको पृथ्वीतलमा घुम्दै उनी एक्लै हिमालय पर्वतमा पुगे ॥१२॥

---

१. याम्ये दिशि महत्तरे इति न.सं.पु.पाठः।
२. तन्माहात्म्यमपृच्छत्तम् इति न.सं.पु.पाठः।
३. एतत्तीर्थस्य माहात्म्यं लिङ्गस्य च विशेषतः। श्रोतुमिच्छाम्यहं तात काफीश्वर इति श्रुतम्, इति न.सं.पु.पाठः।
४. भ्राम्यमाणः इति न.सं.पु.पाठः।
५. प्राप्तवानत्र निर्जनः इति न.सं.पु.पाठः।

स्वर्णक्लिन्ना नदी श्रेष्ठा शैलवती तथा परा। तयोश्च सङ्गमे वत्स ! स्वर्णतीर्थमुदाहृतम् ॥१३॥
तत्र सस्नौ मुदा भक्त्या विधिवन्मुनिपुङ्गवः। तेजस्वी चाभवद्विप्रः सुवर्णाभः सुनिर्मलः ॥१४॥
संप्रेक्ष्य स्वां तनुं दिव्यां तपः काङ्क्षितवान् तदा। धनुषां शतदूरे स आरोहत् ककुदाचलम्[६] ॥१५॥
शैलशृङ्गे रहः स्थानं मत्वा योगस्थलं द्विज। दध्यौ स योगमाश्रित्य[७] समाधिना महेश्वरम् ॥१६॥
सहस्राब्दं स्थितो योगी निश्चलस्वान्तविग्रहः। अभूत्स स्थावरः सत्ये वाल्मीककीटमन्दिरम् ॥१७॥
सहस्राब्दान्तरे रौद्रं[८] वरदानाय योगिने। समुद्भूतं महालिङ्गं ककुदग्रे तदग्रतः ॥१८॥
फाल्गुनपूर्णिमान्ते च निशामध्ये व्यवस्थितम्। तेजसां पुञ्जमेनं हि[९] प्रेक्ष्येशं स मुमोद च ॥१९॥
व्याजहार वचस्तस्मै लिङ्गमूर्त्तिस्तपस्विने। तपस्विन्निह मां पश्य त्वं दिव्यविग्रहो भव ॥२०॥
समाकर्ण्य च तद्वाक्यमुन्मीलितेक्षणो मुनिः। ददर्श स पुरो लिङ्गं स्वात्मनो दिव्यविग्रहम्[१०] ॥२१॥
प्रहर्षितो मुनिर्लिङ्गमानर्च विविधार्हणैः। तुष्टाव च मुहुर्भक्त्या कायहृद्वचनैस्तदा ॥२२॥
आविर्भूतस्ततो रुद्रो व्यक्तरूपश्च सायुधः। उवाच वचनं भूयो मुनिं[११] त्रिभुवनेश्वरः ॥२३॥

काफीश्वर उवाच

तुष्टोऽहं तपसा काफिन्निश्चलेनेदृशेन ते। ददाम्यहं वरं तुभ्यं शृणु चैकाग्रमानसः ॥२४॥
त्रिनेत्रो भव दिव्यस्त्वं मद्विग्रहश्चतुर्भुजः। सुश्रियं डमरुं शूलं मुण्डमालां गृहाण वै ॥२५॥
अद्यादि मम लोके त्वं स्थास्यसि वै मया सह। ईदृशं ते तपो यस्मात्तस्मात्काफिन् सुभक्तितः ॥२६॥

---

सुवर्णमय नदी र शैलवती नाम गरेकी अर्को नदी त्यहाँ रहेकी छन्। हे बाबु ! ती दुईको सङ्गमस्थललाई स्वर्णतीर्थ भनिएको छ, मुनिश्रेष्ठ ती ब्राह्मणले प्रसन्न भएर सभक्ति विधिपूर्वक त्यस तीर्थमा स्नान गरे। त्यसपछि ती ब्राह्मण सुनको जस्तै कान्ति भएका तेजस्वी र निर्मल बने ॥१३-१४॥

उनले आफ्नो शरीरलाई दिव्यस्वरूप भएको देखेर तपस्या गर्ने विचार गरे। उनी त्यसपछि चार सय हात पर रहेको ककुद पर्वतमा चढे। पहाडको शिखरमा रहेको एकान्तस्थललाई योगस्थलका लागि उपयुक्त ठानेर त्यहाँ उनले समाधि लगाए र भगवान् शङ्करको ठूलो ध्यान गरे। सत्ययुगमा आफ्नो सम्पूर्ण इन्द्रिय र शरीरलाई स्थिर गराएर हजार वर्षसम्म तपस्या गर्दा उनी धमिराको गोलाका रूपमा स्थावर बने। हजार वर्षपछि उनको अगाडि ती योगीलाई वरदान दिनका लागि भगवान् शङ्कर महालिङ्गको रूप लिएर प्रादुर्भाव हुनुभयो। त्यसपछि फाल्गुन पूर्णिमाको बिहानीपखको रातमा आफ्नो अघिल्तिर तेजको थुप्रो रहेको देखेर उनी अत्यन्त प्रसन्न भए ॥१५-१९॥

त्यसपछि लिङ्गमूर्ति भगवान् शङ्करले ती तपस्वीलाई भन्नुभयो - हे तपस्वी ! यता मलाई हेर, तिमी दिव्य शरीरका बन। त्यो कुरा सुनेर आँखा खोलेका ती ऋषिले आफ्नो अगाडि दिव्यस्वरूपमा अवस्थित लिङ्गलाई देखे। त्यसपछि ती ऋषिले विभिन्न पूजासामग्रीद्वारा त्यस लिङ्गको पूजा गरे। शरीर, हृदय र वचनले बारम्बार भक्तिपूर्वक स्तुति पनि गरे। त्यसपछि भगवान् रुद्र हतियार साथमा लिएर प्रकट हुनुभयो र तीनै लोकका मालिक शङ्करले ती मुनिलाई फेरि भन्नुभयो ॥२०-२३॥

काफीश्वरले भन्नुभयो - हे काफी ! तिम्रो यस्तो निश्चल तपस्याबाट म सन्तुष्ट भएँ, एकाग्र भएर सुन। म तिमीलाई वर दिन्छु। तिम्रा तीनवटा आँखा होऊन्, चारवटा हात बनून्, मेरोजस्तै दिव्य शरीर बनोस्, तिमी लक्ष्मी, डमरु, त्रिशूल र मुण्डमाला ग्रहण गर। हे काफी ! तिमीले भक्तिपूर्वक यस्तो तपस्या गर्‍यौ, त्यसैले तिमी आजदेखि मसितै मेरो लोकमा रहन पाउनेछौ ॥२४-२६॥

---

६. ककुदाद्रि समारुहत् इति न.सं.पु.पाठः।
७. दध्यौ योगं महत्तत्र इति न.सं.पु.पाठः।
८. रुद्रः इति न.सं.पु.पाठः।
९. पुञ्जमेतद्धि इति न.सं.पु.पाठः।
१०. स्वात्मनं दिव्यरूपिणम् इति न.सं.पु.पाठः।
११. तस्मै इति न.सं.पु.पाठः।

सिद्धर्षिरुवाच

इत्युक्त्वाऽन्तर्दधे तं स चैतल्लिङ्गं प्रदर्शयन्। दत्त्वा वरं विभुस्तस्मै दिव्यं देव सुदुर्लभम् ॥२७॥
एतल्लिङ्गे विलीनेऽजे शिवदूतास्तदाऽऽययुः। शैवं सूर्यप्रभं दिव्यं वहन्तस्ते विमानकम्[१२] ॥२८॥
समास्थायाशु तं याने प्रमथा हि तदाज्ञया। निन्युः शिवपुरं दिव्यं वाद्यगीतमहोत्सवैः ॥२९॥
एतत्तीर्थस्य माहात्म्यं भूयः शृणु विरूपधृक्। विमुक्ता त्रिपुरा काचित्तीर्थस्यास्यैव कारणात् ॥३०॥
पूर्वजन्मविपाकेन परनिन्दनकारणात्[१३]। कुरूपा नाम चासीत्सा म्लेच्छपत्नी मलीमसा ॥३१॥
एकदा दिवसे सा वै फलमूलानि सर्वशः। अन्वेषयन्ती सम्प्राप तस्मिन् तीर्थे स्पृहामयी[१४] ॥३२॥
फाल्गुने मास्यमावास्यां निराहारा तृषार्दिता। अलाभे चाशने सा वै चैतत्तीर्थञ्च निर्जना ॥३३॥
जलं पातुं गता तीरे तत्तीर्थजलमशनि[१५]। शिलाप्रस्खलिताङ्घ्री सा व्यलोडयज्जलं द्रुतम् ॥३४॥
निमज्जिता च तत्तीरे कम्पदेहा मुहुर्मुहुः[१६]। समुत्थायागमत्कष्टात् कुरूपेह तटे द्विज ॥३५॥
ततो ददर्श देहं स्वं कुरूपावयवं पुनः। षोडशाब्दान्वितं रूपं सौन्दर्यञ्च शुभाननम् ॥३६॥
विमृश्य मनसा सा च जलबिम्बं ददर्श तम्। षोडशाब्दान्वितं रूपं सौन्दर्यञ्च शुभाननम् ॥३७॥
प्रेक्ष्य चन्द्राननं रूपं सर्वसौन्दर्यविग्रहम्। भृशं प्रहर्षिता सा स्वं मेने कृतार्थमात्मना ॥३८॥
ततोऽगमद् गृहं सा वै हर्षसम्पूर्णमानसा। अन्याशनानि चाऽऽदाय सुन्दरी हर्षलीलया[१७] ॥३९॥

---

सिद्धर्षिले भने – यति कुरा भनेर वर दिएपछि भगवान् शङ्कर ती ऋषिहरूलाई देवताले पनि दर्शन गर्न नपाउने दिव्य शरीरको दर्शन दिएर अन्तर्धान हुनुभयो। यस लिङ्गमा भगवान् शङ्कर विलीन हुनुभएपछि सूयजस्तै तेजिलो शिवजीको यान लिएर शिवजीका दूतहरू आकाशमार्गबाट त्यहाँ आए। प्रमथ आदि शिवका गणले भगवान् शङ्करको आज्ञानुसार ती मुनिलाई यानमा राखेर गान, बजान आदि उत्सव गर्दै दिव्य शिवपुरमा लगे ॥२७–२९॥

हे विरूपाक्ष ! यो तीर्थको माहात्म्य फेरि सुन – कुनै त्रिपुरा नाम गरेकी स्त्री यसै तीर्थको कारणले गर्दा मुक्त भएकी थिई। पूर्वजन्ममा अर्काको निन्दा गरेर कमाएको कुकृत्यले गर्दा त्यो म्लेच्छकी पत्नी कुरूप तथा पापी थिई। कुनै दिन त्यो म्लेच्छपत्नी फलफूल खोज्दै स्वेच्छानुसार त्यसै तीर्थमा आइपुगी। फागुन महिनाको औंसीका दिन केही खानेकुरा नपाएर भोक तथा प्यासले आत्तिएर त्यो स्त्री एक्लै यस तीर्थमा आइपुगी। त्यसपछि त्यो स्त्री जल पिउन त्यस तीरमा गई। त्यस तीर्थको पानी छुन खोज्दा ढुङ्गामा चिप्लिएर पानीमा डुब्न पुगी ॥३०–३४॥

हे ब्राह्मण ! पानीमा डुबेकी त्यो स्त्री बारम्बार काँप्दै बडो कष्टका साथ उठेर तटमा गई। त्यसपछि उसले आफ्नो कुरूप शरीर तत्कालै सोह्र वर्षको सौन्दर्यले युक्त भएको र सुन्दर मुखले सुसम्पन्न युवतिका रूपमा परिणत भएकी देखे। मनमनै विचार गरेर पानीमा हेर्दा उसले सोह्र वर्षको रूप र सौन्दर्यले युक्त भएको राम्रो मुखको बिम्ब देखी। चन्द्रमाको जस्तो मुख, रूप र सम्पूर्ण सौन्दर्यले युक्त भएको शरीरलाई देखेर त्यो स्त्री अत्यन्त प्रसन्न भई र आफूलाई कृतकृत्य ठानी। त्यसपछि हर्षले पूर्ण चित्त भएर त्यो सुन्दरी स्त्री अरू खानेकुरा लिएर लीला गर्दै तुरुन्त घर पुगी ॥३५–३९॥

---

१२. व्योम्नो यानं समावहन् इति न.सं.पु.पाठः।
१३. परनिन्दाविदूषणात् इति न.सं.पु.पाठः।
१४. प्राप्तवन्ती च तत्तीर्थमन्वेषयन्ती स्पृहागतिः इति न.सं.पु.पाठः।
१५. तत्तीर्थजलसंस्पृशे इति न.सं.पु.पाठः।
१६. मुहुः पुनः इति न.सं.पु.पाठः।
१७. आदायान्यशनान्याशु सा सुन्दरी च लीलया इति न.सं.पु.पाठः।

भृत्या ऊचुः

ददृशुस्ताञ्च तद्भृत्याः पतिपुत्रान्वयास्तदा। मत्वा वानस्पतीं देवीं चित्रं प्राप्ता व्यलोकयन् ॥४०॥
उपहारकरास्तस्या अभिजग्मुर्द्रुतं मुदा। प्रणेमुस्तां हि ते तत्र पृच्छन्ति स्म शिवं पुनः ॥४१॥
स्वागतं देवि ! भद्रं ते चाऽस्ति देहेषु सद्मसु। इहाऽऽगताऽसि भो भद्रे यदृच्छया स्वलीलया ॥४२॥
का त्वं कल्याणि ! सुश्रोणि दैवी वा चाऽसुरी तु वा। राज्ञः कन्यापि वा गेहाद् दिग्भ्रान्त्यात्र समागता ॥४३॥
अथवा किमु भद्राय दीनवनौकसाञ्च नः। भवत्यत्रागता साक्षात्[१८] वनलक्ष्मीर्हि वा वद ॥४४॥

कुरूपोवाच

नाहं देवी पुनर्लक्ष्मी राज्ञः कन्याऽऽसुरी न च। भ्रान्त्या चात्र गता नाहं कुरूपाऽहं प्रभो गुरो ॥४५॥
प्राकृतता[१९] कथं प्राप्ताः यूयं प्रभो गुरो सुत। मां हि कथं न जानीथा वनात्समागतां ध्रुवम् ॥४६॥
अन्वेषितुं फलान्यार्या चाहं वनङ्गताऽधुना। अलाभे फलमूलानां[२०] पुनरत्रागता गृहम् ॥४७॥

भृत्या ऊचुः

ईदृशं यौवनं ते भो रूपसौन्दर्यसंयुतम्। मधुरा च वचःशैली[२१] कथं त्वं मानुषी भवेः ॥४८॥
सुवर्णाभा तनुस्ते च मृगशावकलोचने। पीनोत्तुङ्गस्तनौ साध्वि कुरूपा त्वं कथं भवेः[२२] ॥४९॥
ईदृशीं सुन्दरीं नारीं स्त्रीरत्नं भुवि दुर्लभम्। न चाऽदर्शाम हे[२३] क्वाऽपि त्वादृशीं वनसुन्दरीम् ॥५०॥
सर्वलक्षणसम्पूर्णां सौन्दर्यगुणसंयुताम्। राज्यलक्ष्मीं न सन्देहो निर्णयामो वयमहो[२४] ॥५१॥

---

उसका नोकर, पति, छोरा र सन्तानहरूले वनकी देवीलाई जस्तै गरी उसलाई देखेर छक्क परेर हेरे। हातमा उपहार लिएर तिनीहरू दौडिंदै त्यस स्त्रीका अगाडि आएर नमस्कार गरे। अनि उनीहरूले कुशल प्रश्न गरे र भन्न लागे – हे देवी ! तपाईंलाई स्वागत छ, तपाईंको शरीर र घरमा सञ्चै त छ ? हे भद्रे ! तपाईं यहाँ आफ्नो इच्छानुसार लीला गर्दै आउनुभएको छ। हे कल्याणी ! तपाईं को हुनुहुन्छ ? देवी हुनुहुन्छ वा राक्षसनी हुनुहुन्छ ? अथवा राजाकी छोरी हुनुहुन्छ ? घरबाट दिग्भ्रम भएर यहाँ आउनुभएको छ। अथवा हामी दुःखी वनवासीको कल्याणका निमित्त तपाईं वनलक्ष्मी भएर यहाँ आउनुभएको छ ? बताउनुहोस् ॥४०-४४॥

कुरूपाले भनी – म देवी होइन, लक्ष्मी पनि होइन, राजाकी छोरी पनि होइन, राक्षसी पनि होइन, भुक्किएर यहाँ आएकी पनि होइन, हे प्रभु ! हे गुरु ! म कुरूपा हुँ। तपाईंहरू कसरी अज्ञानी हुनुभयो ? हे प्रभु ! हे छोरा ! मलाई किन चिन्नुहुन्न ? म निश्चय नै वनबाट आएकी कुरूपा हुँ। म फलफूल खोज्न वनमा गएकी थिएँ, फल तथा कन्दमूल नपाएर फर्किएर म फेरि घरमै आएकी छु ॥४५-४७॥

भृत्यहरूले भने – तपाईंको यस्तो युवावस्था, रूप, सौन्दर्य कसरी भयो ? मीठो बोली तपाईंको कसरी बन्यो ? तपाईं कसरी सुन्दरी हुनुभयो ? तपाईंको शरीर सुनको जस्तो छ, आँखा मृगका बच्चाका जस्ता छन्, स्तन साह्रा र अग्ला छन्। हे कुरूपा ! कसरी तपाईं यस्ती हुनुभयो ? संसारमा नै दुर्लभ भएको तपाईंजस्तो स्त्रीरत्न वनसुन्दरी नारीलाई हामीले कहीं पनि देखेका छैनौं। सम्पूर्ण लक्षणले युक्त भएकी सौन्दर्य गुणले सम्पन्न हजुरलाई हामीले राज्यलक्ष्मी भनेर निर्णय गरेका छौं, यसमा सन्देह छैन ॥४८-५१॥

---

१८. अत्रागता भवन्ती वै इति न.सं.पु.पाठः।
१९. प्राकृतं ताम् इति न.सं.पु.पाठः।
२०. फलमूलानि इति न.सं.पु.पाठः।
२१. मधुरां तव वाचोक्तिम् इति न.सं.पु.पाठः।
२२. भवेत् इति न.सं.पु.पाठः।
२३. न च दृष्यमहे इति न.सं.पु.पाठः।
२४. सन्देहस्त्वां निर्णयामहे इति इति न.सं.पु.पाठः।

कुरूपोवाच

तस्मिंश्च सङ्गमे नद्योः शृणुत घटनां शुभाम्[२५] । अस्यूतनोश्च[२६] सौन्दर्यं यतो लब्धं मयाऽधुना ॥५२॥
तज्जलस्पर्शनाद्देहसौन्दर्यं स्फुटितं त्विदम्[२७] । नाहं देवी तथा राज्ञी कुरूपाख्या न संशयः ॥५३॥
जलं पातुं तृषार्ताऽहं गता तत्र नदीतटे। विलोडिता सचैला च ग्रावस्खलितपादतः ॥५४॥
ईदृशस्य शरीरस्य[२८] वाञ्छाऽस्ति भवतां यदि। स्नानार्चनानि यूयं भो कुरुध्वं तत्र साम्प्रतम् ॥५५॥

सिद्धर्षिरुवाच

तस्मिन्काले विरूपाक्ष ! तेषां सम्भाषणे मिथः। व्योम्नः समाययुर्दूताः शङ्करयानवाहकाः ॥५६॥
आदध्युस्त्वरितं तत्र कुरूपां सान्वयां हि ते। आनिन्यू रुद्रलोकं तां तरसा गमनेन च ॥५७॥

विरूपाक्ष उवाच

तद्भृत्या रुद्रलोकं ते तया सार्द्धं कथं गताः। दानधर्माप्लवैर्हीनाः शैवयानगता मुदा ॥५८॥
ज्ञानधर्मविहीनेषु[२९] कथं सन्तुष्टवान् विभुः। अहमेतच्छ्रोतुमना[३०] चित्रं मे हृदि जायते ॥५९॥

सिद्धर्षिरुवाच

आदिगङ्गामहातीर्थे पार्वती च तपस्विनी[३१] । तस्या देहोद्भवः स्वेदः[३२] कौशिकीत्यभिधीयते ॥६०॥
सन्पीड्य पाणिमानीता[३३] भर्त्रा सा तद्गृहाद्यदा। आदिगङ्गां विलङ्घ्य स्वमुपतीर्थं गृहं पथि ॥६१॥
राधशुक्लतृतीयायां सा सस्नौ तत्र भावतः। ययौ भर्त्रा सह गेहं सर्वपापैर्विवर्जिता ॥६२॥
तत्पुण्यभावितात्मा सा चाऽपरतीर्थदर्शनात्[३४] । पुण्यदेहाऽभवत्सा वै तद्धि सम्भाषणात्किमु ॥६३॥

---

कुरूपाले भनी – जुन नदीको सङ्गममा स्नान गरेर मैले यस्तो शरीर र सौन्दर्यलाई प्राप्त गरें त्यस नदीको सङ्गमको विषयमा ध्यान दिएर सुन्नुहोस्। त्यसै नदीको जलस्पर्श गर्दा मेरो यो शरीर सुन्दर बन्यो भन्ने कुरा बुझ्नुहोस्। म देवी होइन, रानी पनि होइन, म त कुरूपा हुँ, यसमा शङ्का छैन। तिर्खाएर पानी पिउन म त्यस नदीको तटमा गएकी थिएँ। ढुङ्गामा गोडा चिप्लिएर लुगैसित पानीमा पछारिएँ। यदि तपाईंहरूलाई पनि यस्तै शरीरको आकाङ्क्षा छ भने तपाईंहरू त्यहाँ गएर अहिले नै डुबुल्की मारी पूजाआज गर्नुहोस् ॥५२-५५॥

सिद्धर्षिहरूले भने – हे विरूपाक्ष ! जब तिनीहरू परस्परमा कुराकानी गर्दै थिए, त्यसबेला शिवजीको यान लिएर दूतहरू आकाशबाट त्यहाँ आइपुगे। उनीहरूले त्यस कुरूपालाई तुरुन्त यानमा राखेर सपरिवार तीव्र गतिले शिवलोकमा लगे ॥५६-५७॥

विरूपाक्षले भने – तिनका नोकरहरू त्यो स्त्रीका साथै दान, धर्म, स्नान नगरीकन पनि शैवयानमा चढेर कसरी रुद्रलोक गए ? ज्ञान र धर्म नभएका ती भृत्यहरूसित भगवान् कसरी सन्तुष्ट हुनुभयो ? यो कुरा म सुन्न चाहन्छु। हृदयमा मलाई अचम्म लागेको छ ॥५८-५९॥

सिद्धर्षिले भने – आदिगङ्गा सबैभन्दा ठूलो तीर्थ हो, सबैभन्दा ठूली तपस्विनी पार्वती हुन्, तिनको शरीरबाट पैदा भएको पसिनालाई कौशिकी भनेर भन्दछन्। त्यस कुरूपालाई त्यसको पतिले विवाह गरेर घरमा ल्याउँदा उसले बाटमा पर्ने आदिगङ्गा नाम गरेको नजिकको तीर्थलाई नाघेर घरमा गएकी थिई। त्यस तीर्थमा वैशाख महिनाको शुक्लपक्षको तृतीयाका दिन उसले भक्तिपूर्वक स्नान गरी त्यसपछि ऊ सम्पूर्ण पापबाट मुक्त भएर पतिका साथै घरमा आई। त्यसै पुण्यले गर्दा पवित्र आत्मा भएकी कुरूपा अर्को तीर्थको स्पर्शले गर्दा झन् पवित्र भई, धेरै के भनूँ ? ॥६०-६३॥

---

२५. शृणुध्वं श्रवणङ्गताः इति न.सं.पु.पाठः।
२६. इमां तनुञ्च इति न.सं.पु.पाठः।
२७. मे त्विदं विदुः इति न.सं.पु.पाठः।
२८. ईदृशेन शरीरेण इति न.सं.पु.पाठः।
२९. ज्ञानधर्मविहीनानाम् इति न.सं.पु.पाठः।
३०. एतच्छ्रोतुमनाऽहञ्च इति न.सं.पु.पाठः।
३१. तपस्विनी च पार्वती इति न.सं.पु.पाठः।
३२. देहोद्भवं स्वेदम् इति न.सं.पु.पाठः।
३३. पाणिं पीड्य समानीता इति न.सं.पु.पाठः।
३४. तीर्थसंस्पृशात् इति न.सं.पु.पाठः।

तज्जलस्पर्शनाद् भूयः कुरूपाऽभूद्विकिल्बिषा। पूर्वजन्मकृतान् पापानभूत्सन्त्यज्य सुन्दरी ॥६४॥
तस्याः संस्पर्शनाद् भृत्याश्चाभूवन् ते विकिल्विषाः। सम्भाषणात् ततस्तस्याः शैवं तेऽपि गता किल ॥६५॥
विशेषेणाऽत्र देशे च ह्येतल्लिङ्गप्रदर्शनात्। तल्लिङ्गस्पर्शनात् भूयश्चाऽऽभाषणाद्[३५] विशेषतः ॥६६॥
अकृतान्यपि पुण्यानि पापानि च यथा नरैः। प्राप्यन्ते कर्मणा येन तद्यथा च वदाम्यहम्[३६] ॥६७॥
देशे क्षेत्रे कुले मर्त्यैः फलांशास्त्रियुगे द्वयोः। एकग्रामे प्रलभ्यन्ते चैककृतापराधतः ॥६८॥
विशेषेण च भूर्यत्र प्रोक्तं भगवता पुरा। कलौ तु केवलं कर्त्ता फलभुक् पापपुण्ययोः ॥६९॥
अकृतेऽपि हि संसर्गादिकस्थानस्थितेरपि। संसर्गदोषतो मर्त्यः पुण्यपापानि चाऽऽप्नुयात् ॥७०॥
फलांशं प्राप्नुयान्मर्त्यो यथावत्पुण्यपापयोः। फलार्द्धं प्राप्नुयाद् भार्या भर्तुश्चैव तथाविधम् ॥७१॥
तस्मात्सर्वप्रयत्नेन सतां[३७] सङ्गं समाचरेत्। यतश्च प्राप्नुयात्पुण्यं ज्ञानं भद्रं स्पृहां सतीम्[३८] ॥७२॥
तस्याः पुण्यप्रभावेण स्पर्शाच्च भाषणादपि[३९]। स्नानैर्ज्ञानैर्विहीनैस्तैर्लब्धः स्वर्गः ह्यनुत्तमः[४०] ॥७३॥

काफीश्वरस्यैव हि ते माहात्म्यं स्वर्णादितीर्थस्य निमेषतो वै।
प्रोक्तञ्च तुभ्यं निखिलञ्च भूयो दान्तेश्वरो यत्र च गच्छतात्त्वम् ॥७४॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे विरूपाक्षतीर्थयात्रायां काफीश्वरस्वर्णतीर्थयोर्माहात्म्यं नामैकाधिकद्विनवतितमोऽध्यायः ॥९२॥

---

फेरि त्यस जलको स्पर्शले गर्दा त्यो कुरूपा पूर्वजन्मको पापबाट मुक्त भएर सुन्दरी बन्न पुगी। त्यसलाई छोएको हुनाले उसका नोकरहरू पनि पापबाट मुक्त भए। त्यससित कुराकानी गरेको हुँदा उनीहरू पनि शिवलोक पुगे। विशेष गरेर यो देशमा यो लिङ्गको दर्शन गर्नाले, यो लिङ्ग छुनाले र कुराकानी गर्नाले दान, धर्म आदि काम नगरीकन पनि कसरी पुण्य प्राप्त हुन्छ, त्यो सुनाउँछु ॥६४-६७॥

सत्य, त्रेता र द्वापरयुगमा एउटाले गरेको पुण्य वा अपराधको फल देश, गाउँ र टेलका सबै मनुष्यहरूले भोग्नुपर्दथ्यो। यस विषयमा भगवान् शङ्करले धेरै कुरा अघि भन्नुभएको छ। कलियुगमा भने पाप र पुण्यको फल जसले गर्छ, त्यसले मात्रै भोग्नुपर्छ। नगरे पनि एकै ठाउँमा बसेको संसर्गजन्य दोषले गर्दा मानिसहरूले पुण्य र पाप प्राप्त गर्दछन् अर्थात् पापीसँगको सम्पर्क भयो भने पाप र पुण्यात्मासँगको सम्पर्क भयो भने पुण्य प्राप्त हुन्छ ॥६८-७०॥

मानिसले जस्तो पाप र पुण्य गरेको छ, त्यसै अनुसारको फल पाउँछ। पतिले गरेका पुण्य वा पापको आधा पत्नीले भोग्नुपर्छ, त्यस्तै पत्नीले गरेको पुण्य र पापको आधा फल पतिले भोग्नुपर्छ। त्यसैले सकेसम्म प्रयास गरेर सज्जनहरूसित मात्रै सङ्गत गर्नुपर्छ किनभने त्यसो गर्नाले पुण्य, ज्ञान र कल्याणको प्राप्तिका साथै आफूले चाहेको कामना सधैँ पूर्ण गर्न सकिन्छ। सत्सङ्गतिको पुण्यको प्रभाव र सज्जनहरूसँगको कुराकानी र स्पर्शले गर्दा स्नान तथा ज्ञानविना पनि तिनीहरूले उत्तम स्वर्गलाई प्राप्त गरेका छन् ॥७१-७३॥

मैले तिमीलाई काफीश्वर र विशेष गरी स्वर्णादि तीर्थको महत्त्व सबै बताएँ। अब तिमी जहाँ दान्तेश्वर भगवान् रहनुभएको छ, त्यस ठाउँमा जाऊ ॥७४॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा काफीश्वर र स्वर्णतीर्थको माहात्म्यनामक बयान्नब्बेऔँ अध्याय पूरा भयो।

---

३५. तस्यां लिङ्गस्पृशायां वै चाभाषणाद् इति न.सं.पु.पाठः।
३६. निशामये इति न.सं.पु.पाठः।
३७. सद्भिः इति न.सं.पु.पाठः।
३८. ज्ञानः भद्रस्पृहां सदा इति न.सं.पु.पाठः।
३९. चाभाषणस्पृशादपि इति न.सं.पु.पाठः।
४०. लब्ध स्वर्गमनुत्तमम् इति न.सं.पु.पाठः।

# त्रिनवतितमोऽध्यायः

## कश्यपेश्वरशिवलिङ्गमाहात्म्यम्

स्कन्द उवाच

स्वर्णतीर्थे ततः स्नात्वा सुवर्णाभप्रभायुतः। दिव्यकलेवरो विप्रः सुप्रभावोऽभवत्पुनः ॥१॥

भूयो जगाम विप्रेशस्तेनर्षिणा समन्तदा। कश्यपेशो[1] हि यत्रास्ते त्रियोजने हि वारुणे ॥२॥

सस्नौ भक्त्या विरूपाक्षः तीर्थे हि काश्यपे वरे। पञ्चोपचारकैर्दिव्यैः कश्यपेशमपूजयत् ॥३॥

माघकृष्णतृतीयायां पूजकः कश्यपेश्वरम्। अपृच्छन्नेमुनिं विप्रस्तन्माहात्म्यं महानिशि ॥४॥

विरूपाक्ष उवाच

नमस्ते मुनिशार्दूल भूदेवेश्वर सन्ततम्। भवतः श्रोतुमिच्छामि[2] माहात्म्यं तीर्थलिङ्गयोः ॥५॥

समुद्भूतं कथं[3] लिङ्गमेतद्वद मुनीश्वर। तीर्थस्य चास्य माहात्म्यमेते केन प्रकाशिते ॥६॥

सिद्धर्षिरुवाच

संसस्नौ कश्यपः पूर्वमस्मिन्तीर्थे मुदा द्विजः। रवौ दिने वृषेऽर्कस्थे शुभकृष्णाष्टमीतिथौ[4] ॥७॥

अत्र स्थितः परं[5] दध्यौ महासमाधिना शिवम्। चराचरञ्जगत्स्रष्टुं शङ्करं कश्यपो मुदा ॥८॥

संवत्सरं तदा व्याप्य सर्वजीवसिसृक्षया। दध्यौ परात्परं भक्त्या कश्यपो मुनिसत्तमः ॥९॥

तत्सङ्क्रान्त्यां समुद्भूतमेतल्लिङ्गं महानिशि। तत्समान्तेऽर्चिते देवे ध्यानस्थे कश्यपे तदा ॥१०॥

---

## अध्याय ९३

### कश्यपेश्वर शिवलिङ्गको माहात्म्य

कार्तिक स्वामीले भन्नुभयो– त्यसपछि ती ब्राह्मणले स्वर्णतीर्थमा स्नान गरे। उनको कान्ति सुनको जस्तो भयो। दिव्य शरीरले युक्त भएका ती ब्राह्मण अत्यन्त प्रभावशाली भए। त्यसपछि ती ब्राह्मण ती ऋषिलाई साथमा लिएर पश्चिमतिर तीन योजन पर जहाँ कश्यपेश्वर भगवान् हुनुहुन्थ्यो, त्यसै ठाउँमा गए। ती विरूपाक्षले त्यस उत्तम काश्यप तीर्थमा स्नान गरे र उनले दिव्य पञ्चोपचार विधिबाट कश्यपेश्वर भगवान्‌को पूजा गरे। माघ कृष्ण तृतीयाका दिन कश्यपेश्वर भगवान्‌को पूजा गरेर बेलुका ती ब्राह्मणले ऋषिसित कश्यपेश्वरको माहात्म्य सोधे ॥१–४॥

विरूपाक्षले भने – हे मुनिश्रेष्ठ ! हे ब्राह्मणका स्वामी ! हजुरलाई बारम्बार नमस्कार छ। म यो तीर्थ र लिङ्गको माहात्म्य सुन्न चाहन्छु। यो लिङ्गको उत्पत्ति कसरी भएको हो ? यो तीर्थको माहात्म्य के छ ? यिनीहरूलाई कसले प्रकाशित गरेका हुन् ? हे मुनीश्वर ! बताउनुहोस् ॥५–६॥

सिद्धऋषिले भने – वृष राशिमा सूर्य गएको बेला आइतबार कृष्ण अष्टमी तिथिको मङ्गलमय दिनमा अघि कश्यप नाम गरेका ब्राह्मणले यस तीर्थमा आएर आनन्दसित स्नान गर्नुभएको थियो। यहाँ बसेर सम्पूर्ण चराचर जगत् लाई सृष्टि गर्ने सामर्थ्य प्रदान गर्ने वरप्राप्तिका लागि कश्यप ऋषिले ठूलो समाधि लगाएर भगवान् शङ्करको ध्यान गर्नुभएको थियो ॥७–८॥

मुनिश्रेष्ठ कश्यप ऋषिले सम्पूर्ण जीवको सृष्टि गर्ने विचार लिएर भक्तिपूर्वक एक वर्षसम्म परभन्दा पर रहेका भगवान्‌को ध्यान गर्नुभएको थियो। एक वर्षपछि कश्यप ऋषि भगवान् शिवमा ध्यानमग्न भएको अवस्थामा त्यसै सङ्क्रान्ति अर्थात् ज्येष्ठ सङ्क्रान्तिको अँध्यारो रातमा यो लिङ्गको प्रादुर्भाव भयो ॥९–१०॥

---

१. कश्यपेश्वरः इति न.सं.पु.पाठः।
२. भवति श्रोतुमिच्छामः इति न.सं.पु.पाठः।
३. कथ समुद्भवम् इति न.सं.पु.पाठः।
४. कृष्णाष्टम्यां तिथौ शिवे इति न.सं.पु.पाठः।
५. अत्रस्थो हि वरम् इति न.सं.पु.पाठः।

आविर्भूतः शिवः साक्षात्तन्निशायां वरं ददौ । तदीप्सितं विरूपाक्ष ! भक्ताय कश्यपाय हि[६] ॥११॥
लब्ध्वा वरं तदा रुद्रात् ससर्ज कश्यपो जगत्[७] । एतल्लिङ्गप्रसादाद्वै चराचरञ्चतुर्विधम् ॥१२॥
तदानी[८] देवताः सिद्धा ऋषयश्चाऽप्सरोगणाः । सस्नुः स्वर्गादिहाऽऽगत्य चाऽस्मिन्तीर्थे समां प्रति ॥१३॥
पूजयन्ति स्म ते[९] भक्त्या चैतल्लिङ्गं दिवौकसः[१०] । स्वं स्वं लोकं ययुस्तस्मात् प्रार्थयन्तः[११] स्वकान्वरान् ॥१४॥
एतत्तीर्थस्य माहात्म्यं लिङ्गस्य च विरूपदृक् । भूतपूर्वं प्रवक्ष्यामि कथां कामपि तां शृणु[१२] ॥१५॥
आसीत्कश्चिन्नरः पूर्वं धर्माधर्माविवेकतः । रक्तविकारदोषेण[१३] नपुंसकोऽभवत्पुरा ॥१६॥
अन्त्यजसदृशो म्लेच्छश्चाऽमर्षी सर्वभुक् तदा । लोकनिन्द्योऽन्वयैस्त्यक्तः पशुक्रीडनतत्परः ॥१७॥
स कदाचिद्धि कालान्ते पञ्चविंशतियोजने । अत्रैव प्राप्तवान् म्लेच्छो दैवयोगेन संभ्रमन् ॥१८॥
ददर्श कश्यपञ्चाऽत्र जटाकलापिनं तदा । पूजयन्तं मुदैनं सः तत्सूक्तं प्रजपन् रहः ॥१९॥
एतत्तीर्थसमालोकाद्[१४] लिङ्गप्रदर्शनाद्धि सः । ज्ञानवानभवन्म्लेच्छः सन्तस्थौ चैवमेव च ॥२०॥
शनैः शनैरुपासृत्य कश्यपस्यान्तिकं हि सः । प्रणनाम मुनिं साक्षाद् ब्रह्माणमपरं द्विज ॥२१॥
मूर्ध्ना प्रणम्य भूमौ तं दण्डवत्पापविग्रहः । साक्षाद् ब्रह्माङ्गजं म्लेच्छो व्याजहार वचस्तदा ॥२२॥

नपुंसक उवाच

दुःखार्णवे च संसारे मददृष्टं भृशं सदा । भ्रमयतीह मां तात निन्दामलीमसैर्युतम् ॥२३॥
कथम्मोक्ष्याम्यहं तात चैतन्निन्द्यं कलेवरम् । न जानामि च तद्धेतुं वद मे ब्रह्मणः सुत ॥२४॥

---

हे विरूपाक्ष ! त्यस रातमा प्रादुर्भाव भएर साक्षात् भगवान् शङ्करले भक्त कश्यपलाई उनले इच्छा गरेको वर दिनुभयो। भगवान् शङ्करबाट वर प्राप्त गरेर यस लिङ्गको प्रभावले गर्दा कश्यपले चारैथरी जगत्को सृजना गर्नुभयो। त्यसबेला यस तीर्थमा देवता, सिद्ध, ऋषि र अप्सराहरूले स्वर्गबाट आएर वर्ष दिनसम्म आनन्दसित स्नान गरेका थिए। ती देवताहरूले भक्तिपूर्वक यस लिङ्गको आनन्दसित पूजा गरे र आफूलाई इच्छा लागेको वर मागेर सहर्ष आ–आफ्नो लोकमा गए ॥११–१४॥

हे विरूपाक्ष ! अघि कुनै व्यक्ति मुक्त भएको घटनासँग सम्बद्ध यस तीर्थ र लिङ्गको माहात्म्य छ, बताउँछु, सुन। अघि कुनै मानिस थियो। उसले धर्म र अधर्मको विवेक नगर्दा रगतमा विकार पैदा भएको दोषले ऊ नपुंसक बन्यो। त्यो म्लेच्छ चाण्डालजस्तो थियो। कसैलाई पनि सहदैनथ्यो, सबैथोक खान्थ्यो, लोकमा उसको निन्दा भएको थियो, परिवारले छाडिदिएका थिए र ऊ पशुक्रीडामा उद्यत थियो। केही समयपछि त्यो म्लेच्छ पच्चीस योजन पर रहेको यस ठाउँमा दैवसंयोगले घुम्दै आइपुग्यो। आनन्दसित जटाधारी शिवको मन्त्र जप्दै एकान्तमा उहाँको पूजा गरिरहेका कश्यपलाई उसले देख्यो। तीर्थ र लिङ्गको दर्शन गर्नासाथ त्यो म्लेच्छ ज्ञानी भयो र त्यसै ठाउँमा उभियो। हे द्विज ! त्यसपछि त्यो म्लेच्छ बिस्तारै–बिस्तारै कश्यपको नजिकै आयो र अर्का साक्षात् ब्रह्माजस्ता मुनिलाई नमस्कार गऱ्यो। ब्रह्माका मानसपुत्र कश्यप ऋषिलाई त्यस म्लेच्छले भूमिमा पापमय शरीरलाई दण्डजस्तै तुल्याएर शिरले नमस्कार गऱ्यो र भन्यो ॥१५–२२॥

नपुंसकले भन्यो – हे तात ! दुःखरूपी समुद्रमा यस संसारमा निन्दा र पापले ग्रस्त भएको मलाई अदृष्टले बारम्बार घुमाइराखेको छ। हे ब्रह्माजीका छोरा कश्यप ! म यो निन्द्य शरीरबाट कसरी मुक्ति पाउँछु ? मुक्तिको कारण मैले थाहा पाउन सकिनँ, मलाई बताइदिनुहोस् ॥२३–२४॥

---

६. कश्यपाय हि भक्तिने इति न.सं.पु.पाठः।
७. रुद्राज्जगतससर्ज कश्यपः इति न.सं.पु.पाठः।
८. अद्यापि इति न.सं.पु.पाठः।
९. मुदा इति न.सं.पु.पाठः।
१०. सुराश्च ते इति न.सं.पु.पाठः।
११. प्राथ्र्य इति न.सं.पु.पाठः।
१२. भूतपूर्वं प्रवक्ष्यामि कश्चिन्मुक्तो हि तच्छृणु इति न.सं.पु.पाठः।
१३. रक्तांशुकसमेनैव इति न.सं.पु.पाठः।
१४. तीर्थमालोकनादेनम् इति न.सं.पु.पाठः।

कश्यप उवाच

अवश्यं भवितव्यं तत्प्राप्तव्यं हि पुरा कृतम्। मा दुःखी भव भो वत्स पुण्यापुण्यं हि यत्कृतम् ॥२५॥
पुराकृतं हि यत्तद्धि शुभाशुभं नपुंसक। इहैव तेन भोक्तव्यं तत्तद्देहेन वै समम् ॥२६॥
इहैव यत्कृतं येन तत्तद्भोक्ष्यति तत्परे। कर्त्तव्यं मङ्गलञ्चातो दैवं भद्रं[१५] भवेद्यतः ॥२७॥
मया चेदं हि कर्तव्यमकर्तव्यमिदं तथा। इति विवेकहीनो यो मूढात्मा स हि वै श्रुतः ॥२८॥
पूर्वजन्मनि भो वत्स भवता[१६] चरितञ्च यत्। धर्माधर्माविवेकेन तस्मान्नपुंसको भवान् ॥२९॥
अस्मिन् तीर्थे नर ! स्नाहि चैतल्लिङ्गं प्रपूजय। अनेनैव शरीरेण त्वं तस्मान्मोक्ष्यसे ध्रुवम् ॥३०॥
पुरुषत्वञ्च वा स्त्रीत्वं लब्धुकामेन चेतसा। लभेताऽत्र कृतस्नानः स्त्रीपुंसोः ताञ्च तां तनुम्[१७] ॥३१॥

सिद्धर्षिरुवाच

आकर्ण्य तद्वचो म्लेच्छो मत्वा तथ्यं तदात्मनः। पुरुषं तमनुध्यायन् हृदा सस्नौ नदीजले[१८] ॥३२॥
निमज्ज्योन्मज्ज्य सर्वाङ्गं हस्ताभ्यां घर्षयन्तदा। निममज्ज पुनस्तत्र विचिन्त्य पुँस्त्वमेव तत्[१९] ॥३३॥
जलादुत्तीर्य सोऽप्याशु ददर्श स्वां तनुं द्विज। मुमुदे[२०] च भृशं प्रेक्ष्य चाऽऽत्मानं पुरुषोत्तमम् ॥३४॥
एतल्लिङ्गं मुदा भक्त्या चाऽपूपुजत्समर्हणैः। आषाढस्याऽसिताष्टम्यामन्तर्हितश्च कश्यपः ॥३५॥
उषित्वा तन्निशां तत्र शिव शिवेति संवदन्। विल्वपत्रैस्तमभ्यर्च्य विनिद्रः पुरुषोत्तमः ॥३६॥
प्रातः स्नात्वा शिवं भूयश्चाऽभ्यर्च्य विधिवद्धि सः। पारणं कृतवान् वन्यं भक्त्या निवेद्य शूलिने ॥३७॥
ततोऽगमन्मुदा युक्तः स्वगृहं पुरुषोत्तमः। तत्र तस्थौ सुखं विप्ररूपेण मोहयन् स्त्रियः ॥३८॥

---

कश्यपले भने – हे बाबु ! अघि गरेको पुण्य र अपुण्यको फल अवश्य भोग गर्नुपर्छ, तिमी दुःख नमान। हे नपुंसक ! पूर्वजन्ममा गरेको खराब र असल कर्मको फल त्यस व्यक्तिले त्यही शरीरद्वारा भोग गर्नुपर्छ। जसले यहाँ जे काम गरेको छ, त्यसै कर्मको फल अर्को जुनीमा उसले भोग गर्नुपर्छ। त्यसैले सधैं कल्याण हुने काम गर्नुपर्छ, त्यसो भएपछि दैवले पनि उसको कल्याण गर्छन्। मैले यो काम गर्नुहुन्छ र यो काम गर्नुहुँदैन भन्ने विवेक जसलाई हुँदैन त्यसलाई मूढात्मा भनिन्छ ॥२५–२८॥

हे बाबु ! तिमीले पूर्वजन्ममा धर्म र अधर्मको विवेकै नगरीकन काम गऱ्यौ, त्यसैले गर्दा तिमी नपुंसक भयौ। त्यसैले तिमी त्यस तीर्थमा स्नान गर र यो लिङ्गको पूजा गर। तिमी यसै शरीरले नपुंसकत्वबाट मुक्ति पाउनेछौ। स्त्री अथवा पुरुष बन्ने चाहना हृदयदेखि नै राखेर यस ठाउँमा स्नान गर्ने व्यक्तिले स्त्री अथवा पुरुषको शरीर पाउन सक्छ ॥२९–३१॥

सिद्धऋषिले भने – म्लेच्छले ती ऋषिको कुरा सुनेर त्यसलाई आफ्नो वास्तविकता सम्झी हृदयले शिवरूप पुरुषको कामना गर्दै त्यस तीर्थमा स्नान गऱ्यो। त्यसले कहिले उत्रने र कहिले डुबुल्की मार्दै सम्पूर्ण अङ्गलाई त्यस तीर्थमा हृदयले पुरुषको शरीर पाउने इच्छा राखेर हातले सम्पूर्ण शरीर माड्दै जलमा आकाण्ठ निमग्न भयो। जलबाट बाहिर आएपछि उसले आफ्नो शरीरलाई सुन्दर पुरुषका रूपमा देख्यो र अत्यन्त आनन्दित भयो ॥३२–३४॥

त्यसपछि उसले आषाढ कृष्ण अष्टमीका दिन त्यस लिङ्गलाई विभिन्न पूजासामग्रीद्वारा भक्तिपूर्वक पूजा गऱ्यो। कश्यप ऋषि अन्तर्धान हुनुभयो। त्यस ठाउँमा शिव-शिव भनेर उसले रात बितायो। बेलपत्रले भगवान् शङ्करलाई पूजा गरेर रातभर जाग्राम बस्यो। बिहान फेरि स्नान गरेर शिवजीलाई उसले विधिपूर्वक पूजा गऱ्यो, वनका फलहरू भगवान् शङ्करलाई चढाएर व्रतको पारायण गऱ्यो। त्यसपछि त्यो उत्तम मानिस खुसी हुँदै आफ्नो घर गयो, ब्राह्मणको रूप लिएर स्त्रीजातिहरूलाई मोहित तुल्याउँदै आनन्दसित त्यहाँ बस्न थाल्यो ॥३५–३८॥

---

१५. भद्रो दैवः इति न.सं.पु.पाठः।
१६. त्वया हि इति न.सं.पु.पाठः।
१७. अत्र स्नानाल्लभेत्सोऽपि स्त्रीपुंसोस्तच्च तत्तनुम् इति न.सं.पु.पाठः।
१८. समत्र वै इति न.सं.पु.पाठः।
१९. भाव्य पुंसस्तनुं हृदा इति न.सं.पु.पाठः।
२०. मुमोद इति न.सं.पु.पाठः।

ततः क्वचित्स कालान्ते पञ्चत्वं प्राप्तवान् पुनः । सार्वभौमपतिर्भूत्वा चाऽभुनक् मेदिनीं सुखम् ॥३९॥
सहस्राब्दं सुखं भुक्त्वा तदन्ते च मृतः पुनः । श्रोत्रियस्य कुले जातो वेदशास्त्रविशारदः ॥४०॥
देशिकः सर्वशास्त्रज्ञो वेदवेदाङ्गतत्त्ववित् । विरक्तो निर्गतो गेहात्तीर्थान्तराय वै तदा ॥४१॥
जलाप्लवाद्धि तीर्थेऽस्मिंल्लिङ्गार्चनप्रभावतः । अत्रैव प्राप्तवान् विप्रः स्नात्वा तीर्थेषु भूतले ॥४२॥
आषाढ्यां पूर्णिमायां सः पूर्वाषाढर्क्षसंयुजि । स्नात्वा तीर्थोत्तमे भक्त्या चैतल्लिङ्गमपूपुजत् ॥४३॥
भूत्वा रात्रौ विनिद्रः स नक्तञ्चकार पारणम् । निवेद्याजाय नैवेद्यं वन्यं पुष्पोपहारकैः ॥४४॥
अवततार तद्यानं व्योम्नो दूतैः समं निशि । ववृषुः पुष्पपत्राणि[२१] लाजासारं समन्ततः ॥४५॥
तमास्थायाऽऽशु ते याने निन्युः शिवपुरं मुदा । वाद्यगीतमहोल्लासैरप्सरोगणसेवितम् ॥४६॥
सैवाऽभवद् गणश्रेष्ठो रुद्रस्याऽनुचरोऽनिशम् । जीवन्मुक्तोऽभवद् विप्रश्चैतल्लिङ्गप्रभावतः ॥४७॥
स्नात्वाऽस्मिन्नत्र या नार्यो लिङ्गमर्चन्ति चेतसा । विचिन्त्य पौरुषं स्वाङ्गे[२२] भवेयुः पुरुषा हि ताः ॥४८॥
प्रादुर्भूता विरूपाक्ष ! पुरुषाश्च तथाविधाः । नार्यो भूताऽबला भूयः पुमांसश्च न संशयः ॥४९॥
यः स्नात्वाऽत्र बुधो लिङ्गं प्रपूजयति भक्तितः । पूर्वजातिं परिज्ञाय रुद्रलोकं प्रगच्छति ॥५०॥
भूयोऽगच्छद्विरूपाक्षः यत्रास्ते स्फटिकेश्वरः । अवाच्यां योजनैकस्मिन्[२३] कान्तितीर्थेन वै समम् ॥५१॥

माहात्म्यमुक्तं प्रवरं मया ते[२४] तीर्थोत्तमस्यैव च शूलिनो हि ।
तत्कश्यपेशस्य विरूपनेत्र ! वक्ष्यामि चान्यं खलु तत्र पुण्यम् ॥५२॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां कश्यपेश्वरमाहात्म्यं नाम त्रिनवतितमोऽध्यायः ॥९३॥

---

अनि त्यो मानिस केही समय बितेपछि दिवङ्गत भयो र अर्को जन्ममा चक्रवर्ती राजा भएर सम्पूर्ण पृथ्वीलाई आनन्दसित भोग गऱ्यो । हजार वर्षसम्म सुखभोग गरेर अन्त्यमा फेरि त्यो मऱ्यो । त्यसपछि वेदशास्त्रको ज्ञाता भएर वैदिक ब्राह्मणको कुलमा पैदा भयो । देश-विदेशको कुरा जान्ने, सम्पूर्ण शास्त्रको ज्ञाता, वेद-वेदाङ्गको तत्ववेत्ता त्यो ब्राह्मण विरक्त भएर तीर्थाटनका निमित्त घरबाट निस्कियो । यस तीर्थको जलमा स्नान गरेको र यस लिङ्गको पूजा गरेको प्रभावले गर्दा पृथ्वीमा रहेका सम्पूर्ण तीर्थहरूमा स्नान गरेर ब्राह्मण फेरि यसै ठाउँमा आइपुग्यो ॥३९-४२॥

पूर्वाषाढा नक्षत्रले युक्त भएको असारको पूर्णिमाको दिन यस तीर्थमा स्नान गरेर त्यस ब्राह्मणले भक्तिपूर्वक यस लिङ्गको पूजा गऱ्यो । त्यसले रातभर जाग्राम बसेर भगवान् शङ्करलाई वनमा पैदा भएका कन्दमूल, नैवेद्य र फूलहरू चढाएर व्रतको पारायण गऱ्यो । राति आकाशबाट दूतहरूले त्यहाँ विमानलाई ओह्राले, चारैतिर फूल र लाजाको वर्षा भयो । गाना, बजाना र ठूलो उत्सवका साथ अप्सराहरूद्वारा सुसेवित त्यस ब्राह्मणलाई ती शिवका दूतहरूले तुरुन्त यानमा राखेर शिवजीको लोकमा लगे । यसै लिङ्गको प्रभावले गर्दा जीवन्मुक्त भएर त्यो ब्राह्मण शिवजीका भक्त र गणका श्रेष्ठ सदस्य भए ॥४३-४७॥

जुन स्त्रीजातिले पुरुष हुन पाऊँ भन्ने चित्तले भावना गरेर यस तीर्थमा स्नान गरी यस लिङ्गको पूजा गर्छन्, तिनीहरू पुरुष हुन पाउँछन् । हे विरूपाक्ष ! त्यस किसिमका पुरुषहरू जीवन्मुक्त हुन्छन् र नारीहरू पुरुष हुन्छन्, यसमा सन्देह छैन । जुन विद्वान् मानिसले यहाँ स्नान गरेर भक्तिपूर्वक लिङ्गको पूजा गर्छ, त्यसले आफ्नो पूर्वजन्मको सबै कुरा थाहा पाउँछ र ऊ रुद्रलोक जान्छ । त्यसपछि विरूपाक्ष एक योजन पश्चिमतिर कान्तितीर्थका साथ जहाँ स्फटिकेश्वर महादेव रहनुभएको थियो, त्यसै ठाउँमा गए । हे विरूपाक्ष ! मैले तिमीलाई उत्तम तीर्थ र कश्यपेश्वर महादेवको माहात्म्य बताएँ, पुण्यदायक अरू पनि माहात्म्य बताउँछु ॥४८-५२॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा कश्यपेश्वरको माहात्म्यनामक त्रियानब्बेौँ अध्याय पूरा भयो ।

---

२१. ववर्षुः पुष्पवर्षाणि इति न.सं.पु.पाठः ।
२२. भाव्य पुरुषतां स्वाङ्गम् इति न.सं.पु.पाठः ।
२३. योजनमात्रकेऽवाच्याम् इति न.सं.पु.पाठः ।
२४. प्रोक्तं मया ते माहात्म्यम् इति न.सं.पु.पाठः ।

# चतुर्नवतितमोऽध्यायः

## कान्तितीर्थस्फटिकेश्वरयोर्माहात्म्यम्

स्कन्द उवाच

तीर्थे च काश्यपे स्नात्वा विरूपाक्षो घटोद्भव। तेजस्वी समभूत्पूर्वं कुष्ठव्रणविवर्जितः ॥१॥
ततोऽगमद्विरूपाक्षो यत्राऽऽसीद् गोपदेश्वरः। कान्तितीर्थे मुदा स्नात्वा स्फटिकेशमपूजयत् ॥२॥
माघकृष्णचतुर्थ्यां स लिङ्गमभ्यर्च्य तन्निशि। पप्रच्छ नेमुनिं तत्त्वं तत्तीर्थलिङ्गयोर्मुने ॥३॥

विरूपाक्ष उवाच

नमस्ते भगवन् दान्त मुक्तिज्ञानप्रकाशक। भूयोऽहं[1] श्रोतुमिच्छामि माहात्म्यं तीर्थलिङ्गयोः ॥४॥
को मुक्तोऽभून्[2] मुने मर्त्य एतस्मिन् स्नातको विभो। लिङ्गार्चनात्तथा भूयः को मुक्तो वद मेऽधुना ॥५॥

सिद्धर्षिरुवाच

हिमवतः सुतश्चैष नाम्ना काकन्द एव च। स्फटिकैश्चन्द्रपाषाणै राजमानो ह्यभूद्गिरिः ॥६॥
एतत्पर्वतशृङ्गाच्च चन्द्रकान्तमणेः[3] पुरा। समुद्भूता नदी दिव्याः कन्दराल्लघुगामिनी ॥७॥
चन्द्रकान्तिर्नदीपुण्या हिमस्रवा तथापरा। तयोश्च सङ्गमे वत्स कान्तितीर्थमुदाहृतम् ॥८॥
एतत्तीर्थं विधिः प्रेक्ष्य मुमुदे[4] च भृशं द्विज। सस्नौ ततो मुदैतस्मिन् विधिवद्धि तदा सुखम् ॥९॥
विधाता जलमाप्लाव्य[5] चात्रैव ध्यातवान् विभुः। भक्त्या समाधिनात्मानं समाराधितवान् हरम् ॥१०॥
ततो लिङ्गं समुद्भूतं स्फटिकाश्ममयं शुभम्। आनर्च विधिवद्धाता भक्त्या पञ्चोपचारकैः ॥११॥
संपूज्य च ततो लिङ्गं धाताऽसौ विधिपूर्वकम्। समागमन्मुदा वत्स ! ब्रह्मलोकं सनातनम् ॥१२॥

---

## अध्याय – ९४

### कान्तितीर्थ र स्फटिकेश्वर वा गोपेश्वरको माहात्म्य

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! अघि विरूपाक्ष काश्यप तीर्थमा स्नान गरेर कुष्ठरोगबाट मुक्त भई तेजस्वी बनेका थिए। त्यसपछि विरूपाक्ष जहाँ गोपदेश्वर महादेव हुनुहुन्थ्यो, त्यहाँ गए। कान्तितीर्थमा आनन्दसित स्नान गरे र गोपदेश्वर वा स्फटिकेश्वर महादेवको पूजा गरे। माघ कृष्ण चतुर्थीको राति लिङ्गको पूजा गरेर। उनले त्यो तीर्थ र लिङ्गको तत्त्वका बारेमा नेमुनिसँग प्रश्न गरे ॥१–३॥

विरूपाक्षले भने – मुक्ति र ज्ञानलाई प्रकाशित तुल्याउने हे भगवन् ! हजुरलाई नमस्कार छ। म हजुरबाट यस तीर्थ र लिङ्गको माहात्म्य सुन्न चाहन्छु। यस तीर्थमा स्नान गरेर कुन मानिस मुक्त भयो ? यस लिङ्गको पूजा गर्नाले कसलाई मुक्ति मिल्यो ? हे प्रभु ! मलाई अब यो बताउनुहोस् ॥४–५॥

सिद्धर्षिले भने – काकन्द नाम गरेको स्फटिक र चन्द्रकान्तमणिले युक्त भएको पर्वत हिमालयको छोरो भएर पैदा भयो। यसै पहाडको टाकुरामा मणिमय गुफाबाट चन्द्रकान्ति नाम गरेको विस्तारै बग्ने दिव्य नदी पैदा भइन्। हे बाबु ! चन्द्रकान्ति नाम गरेको पवित्र नदी र हिमस्रवा नाम गरेकी अर्की नदीको सङ्गमलाई कान्तितीर्थ भनिएको छ। हे विप्र ! ब्रह्माजी यो तीर्थ देखेर अत्यन्त खुसी हुनुभयो। त्यसपछि उहाँले यस तीर्थमा आनन्द मान्दै विधिपूर्वक सुखसित स्नान गर्नुभयो। त्यसपछि ब्रह्माले यसै ठाउँमा स्नान गरेर भक्तिपूर्वक समाधि लगाई भगवान् शङ्करको ध्यान र आराधना गर्नुभयो। अनि त्यहाँ स्फटिक मणिले बनेको कल्याणदायक शिवलिङ्गको उत्पत्ति भयो। ब्रह्माजीले पञ्चोपचार विधिले सभक्ति त्यस लिङ्गको पूजा गर्नुभयो। हे बाबु ! त्यस लिङ्गलाई विधिपूर्वक पूजा गरेर ब्रह्माजी प्रसन्न हुँदै सनातन ब्रह्मलोक जानुभयो ॥६–१२॥

---

१. भूयो वः इति न.सं.पु.पाठः।
२. मुक्तोऽत्र इति न.सं.पु.पाठः।
३. एतत्पर्वतसानौ च चन्द्रकान्त्यमणेः पुरा। समुद्भवा, इति न.सं.पु.पाठः।
४. मुमोद इति न.सं.पु.पाठः।
५. जलाप्लाव्य ततो धाता इति न.सं.पु.पाठः।

सोमोऽपि च ततो ज्ञात्वा श्रुत्वा पितुर्मुखात्पुरा। म्लानदेहोऽगमत्तत्र मृगाङ्केन हतच्छविः ॥१३॥
ततो भक्त्याऽन्वितः सोमः संसस्नौ विधिपूर्वकम्। अपश्यत् स्वतनुं स्नात्वा कौमुदीललितच्छविम् ॥१४॥
यथा चाऽऽसीत्पुरा कान्तिः स्वदेहे निर्मले शुभे। आसीत्तद्द्विगुणा कान्तिर्मृगाङ्को मुमुदे भृशम् ॥१५॥
ततः सोमोऽपि काकन्दे समास्थायाऽत्र भक्तितः। आनर्च विधिवल्लिङ्गं पञ्चोपचारकैश्च सः ॥१६॥
स्फटिकेशस्तदा रुद्र आविर्भूतो विरूपदृक्। अवोचत्स शुभं वाक्यं सोमाय स्वात्मने विभुः ॥१७॥

स्फटिकेश्वर उवाच

तवाऽर्चनैश्च तुष्टोऽहं भक्तिभिश्च स्तवैर्विधो। वरं दास्येऽधुना तुभ्यं शृणु चैकाग्रमानसः[६] ॥१८॥
अद्यादि निर्मलो देहस्तव सोम ! भविष्यति। ज्योत्स्नाभिश्चैव संयुक्तः सर्वोपरि महाच्छविः ॥१९॥
लोकसाक्षी भवेः सोम ! लोकान् प्ररक्ष सन्ततम्। शीतलैः किरणैर्नित्यं मदंशस्त्वं न संशयः ॥२०॥
गच्छ सोम ! प्रसादान्मे व्योम्नि सञ्चर विज्वरः। अव्याहतगतिर्भूत्वा प्रपालय जगत्सुखम् ॥२१॥

सिद्धर्षिरुवाच

ततः समाययुर्देवाश्चात्र स्नातुं मुदाऽन्विताः। विमानैर्देवकन्याभिः समञ्च त्वरितं तदा ॥२२॥
प्रेक्ष्य चन्द्रमसा लब्धं जनास्त्वाह्लादनं वरम्। पूर्वस्य द्विगुणं शुभ्रं स्नातुमत्र समागताः ॥२३॥
स्नात्वा तत्र सुराश्चाऽन्ये लिङ्गमेतदपूपुजन्[७]। भक्त्योपचारकैर्दिव्यैः प्रार्थयन्तो[८] वरान् बहुन् ॥२४॥
सिद्धमनोरथाः सर्वे कान्तिसौन्दर्यविग्रहाः। ततो ययुश्च ते स्वर्गं हर्षविस्फुल्लमानसाः ॥२५॥
आसीत् कश्चिद् द्विजश्रेष्ठो धर्मदास इति श्रुतः। स कदाचिद्दिने चाऽत्र सम्प्राप्तवान् यदृच्छया ॥२६॥
स्नात्वा स्नात्वा च तीर्थेषु धर्मदासो रसातले। ज्ञात्वा प्रतिमां लिङ्गञ्च प्रपूजितुमिहाययौ ॥२७॥

---

मृगको चिह्नले गर्दा क्षीणकान्ति भएका चन्द्रमा पनि आफ्ना बाबुको मुखबाट त्यहाँको माहात्म्य सुनेर त्यस ठाउँमा गए। त्यसपछि चन्द्रमाले पनि भक्तिपूर्वक त्यस तीर्थमा स्नान गरे, अनि उनले चन्द्रिकाले गर्दा उज्यालो कान्ति भएको आफ्नो शरीरलाई देखे। जस्तो आफ्नो निर्मल शरीरमा अघि कान्ति थियो त्यसको दुई गुणा बढी कान्ति भयो। चन्द्रमा अत्यन्त प्रसन्न भए। त्यसपछि चन्द्रमाले पनि काकन्द नाम गरेको पर्वतमा बसेर सभक्ति विधिपूर्वक पञ्चोपचारले त्यस लिङ्गको पूजा गरे। हे विरूपाक्ष ! त्यसबेला स्फटिकेश्वर शङ्कर प्रकट हुनुभयो र आफ्नै आत्मा भएका चन्द्रमालाई भन्नुभयो ॥१३-१७॥

स्फटिकेश्वरले भन्नुभयो – हे चन्द्रमा ! तिम्रो पूजा, भक्ति र स्तुतिबाट म प्रसन्न भएँ, तिमीलाई वर दिन्छु, एकचित्त भएर सुन। हे चन्द्रमा ! आजदेखि तिम्रो शरीर निर्मल हुनेछ, सबैभन्दा बढी कान्तिले युक्त भएर सबैभन्दा माथि रहन पाउनेछौ। हे चन्द्रमा ! तिमी सबैका साक्षी बन, शीतल किरणहरूद्वारा प्राणीहरूको सधैँ रक्षा गर, तिमी मेरै अंश हौ, शङ्का छैन। हे चन्द्र ! मेरो अनुग्रहले गर्दा नरोकिईकन सधैँ तिमी तापरहित भएर आकाशमा भ्रमण गर, संसारको आनन्दसित पालना गर ॥१८-२१॥

सिद्धऋषिले भने – त्यसपछि यस ठाउँमा स्नान गर्न देवकन्याहरूका साथ विमान चढेर प्रसन्न हुँदै तुरुन्त देवताहरू आए। अघिको भन्दा दुई गुणा सेतो भएको आनन्ददायक वर चन्द्रमाले पाए भन्ने थाहा पाएर धेरै मानिसहरू यहाँ स्नान गर्न आए। त्यहाँ देवताहरूले स्नान गरेर भक्तिपूर्वक विभिन्न दिव्य पूजासामग्री लिएर धेरैथरी वर माग्दै यस लिङ्गको पूजा गरे। कान्ति र सौन्दर्यले युक्त भएर आफ्नो इच्छा पूर्ण गरी सबै देवताहरू हर्षले विभोर हुँदै स्वर्ग गए। धर्मदास नाम गरेको कुनै एउटा ब्राह्मण थिए, कुनै दिन ती आफूखुसी यस ठाउँमा आइपुगे। धर्मदास पृथ्वीमा रहेका विभिन्न तीर्थहरूमा स्नान गर्दै शिवको प्रतिमा र लिङ्ग छ भन्ने थाहा पाएर पूजा गर्न यहाँ आएका थिए ॥२२-२७॥

---

६. मनः समाहितः इति न.सं.पु.पाठः।
७. इदं लिङ्गमपूपुजन् इति न.सं.पु.पाठः।
८. प्रार्थयंश्च इति न.सं.पु.पाठः।

कान्तितीर्थे मुदा सस्नौ कुशहस्तो यथाविधि । अदर्शत् स्वां तनुं विप्रः कान्तियुक्तां यथा विधुः ॥२८॥
समालोक्य स्वमात्मानं विननाद भृशं द्विजः । समागत्य ततश्चाऽत्र चाऽपश्यदेनमीश्वरम् ॥२९॥
आश्विनपूर्णिमायां स चाऽश्विन्यृक्षेण संयुजि । अपूपुजल्लिङ्गमेतत् स्नातको भक्तिकृन्मुदा ॥३०॥
अपश्यत्कामधेनुं स व्रजन्तीं गगनेन वै । पदेनैकेन सम्पीड्य लिङ्गं पयःस्रवां निशि ॥३१॥
ततः प्रभृति लिङ्गं तद्विख्यातं गोपदेश्वरम् । मेने कृतार्थतां विप्रश्चाऽऽत्मानमात्मना तदा ॥३२॥
तन्निशायां मृतश्चाऽत्र प्राप्तकालो[१] द्विजोत्तमः । जप्यमाने तदात्मा वै लिङ्गार्चने च भक्तितः ॥३३॥
तमास्थाय ततो दूता याने निन्युः शिवालयम् । तालमृदङ्गगीतैस्तमप्सरोगणसेवितम् ॥३४॥
अद्याऽप्यसौ भवेद्विप्रः शङ्करानुचरोऽनिशम् । एतल्लिङ्गप्रसादाद्धि तीर्थस्य च विशेषतः ॥३५॥
एतल्लिङ्गञ्च येऽर्चन्ति कान्तितीर्थजलाप्लवाः । तपःकृष्णचतुर्दश्यां तेषां पुण्यफलं शृणु ॥३६॥
पूर्वजन्मार्जितैः पापैर्विमुच्यन्ते हि तत्क्षणात् । सार्वभौमा नृपा भूत्वा भुञ्जते सकलं सुखम् ॥३७॥
देहान्ते च शिवस्थानं ते यास्यन्ति विमानगाः । सेविताश्चाप्सरोभिश्च पुत्रभार्यासमन्विताः ॥३८॥
अतः पश्चिमदेशे च योजनादूर्ध्वदूरतः । गच्छ विरूपदृग् भूयो यत्र चण्डेश्वरो विभुः ॥३९॥
कन्दराया अधस्थानमुग्रतीर्थमुदाहृतम् । स्नातकस्तत्र चण्डेशपूजनादुद्रलोकभाक् ॥४०॥
रूपवती नदी श्रेष्ठा रुद्रावती तथापरा । सङ्गमे हि तयोर्दिव्यमुग्रतीर्थमुदाहृतम् ॥४१॥
एतद्धि तुभ्यं कथितं मया च धीमन्माहात्म्यं स्फटिकेश्वरस्य ।
कान्त्याख्यतीर्थस्य विशेषतो वै चाऽऽधाय चित्ते कुरु तत्र भक्तिम् ॥४२॥
इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां
कान्तितीर्थस्फटिकेश्वरयोर्माहात्म्यं नाम चतुर्नवतितमोऽध्यायः ॥९४॥

---

हातमा कुश लिएर विधिपूर्वक उनले प्रसन्न हुँदै कान्तितीर्थमा स्नान गरे । जसरी चन्द्रमा कान्तियुक्त भएका थिए, ती ब्राह्मणले आफ्नो शरीरलाई त्यस्तै कान्तिले सुसम्पन्न देखे । आफ्नो शरीरलाई सुन्दर देखेर ब्राह्मणले अत्यन्त खुसी भई उच्च स्वरले ॐकारको ध्वनि जगाए । त्यसपछि उनले यहाँ आएर भगवान् शङ्करलाई देखे । अश्विनीनत्रले युक्त भएको आश्विन पूर्णिमाको दिन स्नान गरेर प्रसन्न हुँदै भक्तिपूर्वक तिनले यस लिङ्गको पूजा गरे ॥२८–३०॥

ती ब्राह्मणले राती एउटा पाउले लिङ्गलाई मिचेर दुध चुहाई आकाश मार्गले जान लागेकी कामधेनु गाईलाई देखे । त्यसै समयदेखि त्यस लिङ्गको नाम गोपदेश्वर भयो । ब्राह्मणले आफैँले आफैँलाई कृतार्थ ठाने । त्यसै रातमा लिङ्गको भक्तिपूर्वक पूजा गरेर जप्दाजप्दै लिङ्गात्मा भएका ती ब्राह्मण कालले गर्दा यसै ठाउँमा दिवङ्गत भए । अप्सराहरूका ताल, मादल र गानद्वारा सुसेवित ती ब्राह्मणलाई यानमा राखेर दूतहरूले शिवलोकमा लगे । आज पनि ती ब्राह्मण यो लिङ्ग र विशेषगरी तीर्थको कृपाले गर्दा सधैँ भगवान् शङ्करको अनुचर भएर बसेका छन् ॥ ॥३१–३५॥

माघ कृष्ण चतुर्दशीका दिन कान्तितीर्थको जलमा स्नान गरेर जसले यस लिङ्गको पूजा गर्छन् तिनको पुण्यफल सुन्नुहोस् । तिनीहरू तुरुन्त पूर्वजन्ममा गरेका पापबाट मुक्त हुन्छन् र चक्रवर्ती राजा भएर सम्पूर्ण सुखभोग गर्न पाउँछन् । शरीरत्याग गरेपछि छोरा र पत्नीका साथै उनीहरू अप्सराद्वारा सेवित भएर यानमा चढी शिवलोक जान्छन् ॥३६–३८॥

कान्तितीर्थभन्दा पश्चिमतिर एक योजन पर जहाँ चण्डेश्वर भगवान् रहनुभएको छ, त्यस ठाउँमा जाऊ । गुफाको तलतिर उग्रतीर्थ छ, जसले त्यस तीर्थमा स्नान गरेर चण्डेश्वर भगवान् पूजा गर्छ, त्यो रुद्रलोकमा बस्न पाउँछ । त्यहाँ रूपवती र रुद्रावती नाम गरेका नदीहरू छन् । ती दुईको सङ्गमस्थलमा दिव्य तीर्थ छ, त्यसलाई उग्रतीर्थ भन्छन् । हे बुद्धिमान् ! मैले स्फटिकेश्वर र कान्तितीर्थको माहात्म्य तिमीलाई बताएँ । त्यसलाई भक्तिपूर्वक हृदयमा धारण गरेर त्यस ठाउँमा जाऊ ॥३९–४२॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा कान्तितीर्थ र स्फटिकेश्वरको माहात्म्यनामक
चौरान्नब्बेऔं अध्याय पूरा भयो ।

---

१. कालप्राप्तः इति न.सं.पु.पाठः ।

# पञ्चनवतितमोऽध्यायः

## उग्रतीर्थ-चण्डेश्वरशिवलिङ्गयोर्माहात्म्यम्

स्कन्द उवाच

एवं सम्भाषितं वाक्यं नेमुनिना हितात्मना। समाकर्ण्य स तेजस्वी मुमुदे[1] च भृशं मुने ॥१॥
भूयो जगाम विप्रोऽसौ नेमुनिना समं मुने। यत्र चण्डेश्वरस्तस्थौ देव्या च प्रमथैः समम् ॥२॥
माघकृष्णस्य पञ्चम्यामुग्रतीर्थजलाप्लुतः। तन्निशायां विनिद्रोऽभूच्चण्डेश्वरमपूपुजत् ॥३॥
उषित्वा पूजकस्तत्र विप्रोऽसौ नेमुनिं मुनिम्। अपृच्छत्तीर्थमाहात्म्यं लिङ्गस्य चैव तत्त्वतः ॥४॥

विरूपाक्ष उवाच

भगवन् मुनिशार्दूल ! लोकधर्मप्रकाशकः। स्नातञ्च पूजितं लिङ्गं मयाऽत्र त्वत्प्रसादतः ॥५॥
एतल्लिङ्गं समुद्भूतञ्चैतत्तीर्थं कथं पुनः। केन प्रकाशितं लिङ्गं तीर्थञ्चैव तथा प्रभो ॥६॥
श्रोतुमिच्छाम्यहञ्चैतत्सर्ववार्ताविशारद। तयोः समुद्भवे तत्त्वं वद मे नेमुनेऽधुना ॥७॥

नेमुनिरुवाच

आसीत्कश्चित्पुरा विप्रश्च्यवनो नाम विश्रुतः। सत्यवादी जितक्रोधः सर्वसत्त्वदयापरः ॥८॥
स कदाचिद् द्विजः काले चात्रैव प्राप्तवान्मुनिः। आभ्रम्य सर्वतीर्थानि स्नातकस्तेषु सन्ततम् ॥९॥
उग्रतीर्थे मुदा सस्नौ च्यवनोऽयं यथाविधि। पितृदेवमुनीनाञ्च भक्त्या चकार तर्पणम्[2] ॥१०॥
विधिवदत्र स स्नात्वा चैतत्तीर्थे ह्यसौ द्विजः। स्कन्दगिरेरधः शृङ्गे[3] समचिन्तयदीश्वरम् ॥११॥
मौनी वाताशनो भूत्वा निराहारो जितेन्द्रियः। योगासनो निरालम्बश्चकाराऽत्र तपो भृशम् ॥१२॥

---

## अध्याय - ९५

### उग्रतीर्थ र चण्डेश्वरशिवलिङ्गको महिमा

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! अर्काको सधैं हित चाहने नेमुनिले भनेको वचनलाई सुनेर तेजस्वी विरूपाक्ष अत्यन्त खुसी भए। त्यसपछि ती विरूपाक्ष ब्राह्मण नेमुनिलाई साथमा लिएर जहाँ देवी र प्रमथगणका साथ चण्डेश्वर भगवान् बस्नुभएको थियो, त्यसै ठाउँमा गए। माघ कृष्ण पञ्चमीका दिन राती उग्रतीर्थमा स्नान गरेर त्यसै रातमा जाग्राम बसे र चण्डेश्वर महादेवको पूजा गरे। पूजा गरिसकेपछि ती ब्राह्मणले बसेर लिङ्गको र तीर्थको वास्तविक माहात्म्य नेमुनिसँग सोधे ॥१-४॥

विरूपाक्षले भने – हे भगवान् ! हे मुनिश्रेष्ठ ! हजुर सम्पूर्ण लोकधर्मको बारेमा व्याख्या गर्न सक्नुहुन्छ, हजुरको कृपाले गर्दा यस ठाउँमा रहेर मैले स्नान गरेँ, लिङ्गको पूजा गरेँ। सम्पूर्ण वृत्तान्त जान्न सक्ने हे नेमुनि ! यो लिङ्ग र यो तीर्थको उत्पत्ति कसरी भयो ? यो लिङ्ग र तीर्थलाई कसले प्रकाशित गर्‍यो ? तीर्थ र लिङ्गको उत्पत्तिको रहस्य म सुन्न चाहन्छु, मलाई त्यो रहस्य अब बताइदिनुहोस् ॥५-७॥

नेमुनिले भन्नुभयो – अघि सत्यवादी, रीसलाई जित्न सक्ने र सम्पूर्ण प्राणीहरूमाथि दया गर्न सक्ने च्यवन नाम गरेका कुनै ब्राह्मण थिए। ती ब्राह्मण कुनै समयमा सम्पूर्ण तीर्थहरू घुमेर तिनीहरूमा स्नान गर्दै यस ठाउँमा आइपुगे। च्यवन ऋषिले यस उग्रतीर्थमा आएर आनन्दसित विधिपूर्वक स्नान गरे। तिनले भक्तिपूर्वक पितृ, देवता र ऋषिलाई क्रमैले तर्पण दिए। च्यवन ऋषिले विधिपूर्वक यस तीर्थमा स्नान गरेर स्कन्द पर्वतभन्दा तल रहेको शिखरमा बसी भगवान् शिवको ध्यान गरे। जितेन्द्रिय, निराहारी, वायुपान गर्ने र मौनी भएर योगासन बाँधी निरालम्ब हुँदै उनले यस ठाउँमा खूब तपस्या गरे ॥८-१२॥

---

१. मुमोद इति न.सं.पु.पाठः।
२. चकार तर्पणं भक्त्या पितृदेवमुनीन् क्रमात् इति न.सं.पु.पाठः।
३. सस्नौ इति न.सं.पु.पाठः।

एवं द्वादशवर्षं स योगीश्वरो हि निश्चलः। सांख्ययोगेन देहे स्वे ह्यचिन्तयत्परं शिवम् ॥१३॥
एतल्लिङ्गं समुद्भूतमीषे शुक्लाष्टमीदिने। आविर्भूतस्ततो रुद्रः सदेहः साम्प्रतं पुनः ॥१४॥
ततो योगीश्वरायेश इदं वचनमब्रवीत्। मयि भक्तिरतोऽसि त्वं तस्माद् दास्ये वरं शृणु ॥१५॥
यतो मम प्रिये स्नात्वा चोग्रतीर्थे मुदान्वितः। मां सुचिन्तितवानत्र च्यवन ! मुक्तिमाप्स्यसि[४] ॥१६॥
दत्त्वा वरं ततो रुद्रश्च्यवनाय स्वसेविने[५]। विद्योतयन् दिशो भाभिस्तल्लिङ्गेऽसौ तिरोदधे ॥१७॥
च्यवनं रुद्रदूता हि निन्युः शिवपुरं लघु। शैवे याने तमास्थाय रुद्रगणैः प्रसेवितम् ॥१८॥
कश्चित्कालान्तरे वीरश्चण्डो नाम महासुरः। अन्धकस्य सुतो वार्त्तां क्वचिच्छुश्राव भार्गवात् ॥१९॥
वार्तालापप्रसङ्गेन[६] चैतल्लिङ्गस्य सोऽसुरः। एतत्तीर्थस्य माहात्म्यं विमुक्तश्च्यवनः पुरा ॥२०॥
उपदेशं समादाय भक्त्या गुरोः प्रहर्षितः। उग्रतीर्थं समासाद्य मुदा सस्नौ तपोमनाः ॥२१॥
चैत्रशुक्लनवम्याञ्च चण्डासुरो महाबली। पूर्वोक्तविधिना चाऽत्र चोग्रतीर्थजलाप्लुतः ॥२२॥
तत्तीर्थे स्नातकश्चण्डो लिङ्गमेतदपूपुजत्। पञ्चोपचारकैर्भक्त्या जपार्चनमहोत्सवैः ॥२३॥
पांसुमुष्टिं सकृद् दत्त्वा[७] सन्तुष्टात्मा हि नित्यशः। तदग्रतोऽसुरो भूत्वा चाऽधोमुखः प्रतप्तवान् ॥२४॥
एवं तपश्चकाराऽसौ महोग्रं हि[८] दशाब्दकम्। एतल्लिङ्गाद्विनिर्गत्य व्याचष्ट वचनं शिवः ॥२५॥

---

बाह्र वर्षसम्म ती योगीश्वरले निश्चल भएर साङ्ख्य र योगको सिद्धान्त अनुसार आफ्नो शरीरमा शिवजीको ध्यान गरे। आश्विन महिनाको शुक्लपक्षको अष्टमीका दिन यस लिङ्गको प्रादुर्भाव भयो र त्यसपछि भगवान् रुद्र उत्पन्न हुनुभयो ॥१३-१४॥

भगवान् शङ्करले योगीश्वरलाई भन्नुभयो – तिमी मेरो भक्तिमा डुबेका छौ, त्यसैले तिमीलाई म वर दिन्छु, सुन। किनभने मेरो प्यारो यस उग्रतीर्थमा स्नान गरेर तिमीले मेरो ध्यान गर्‍यौ, त्यसैले हे च्यवन ! तिमी मुक्त होऊ। त्यसपछि आफ्ना भक्त च्यवनलाइ वरदान दिएर आफ्नो कान्तिद्वारा सम्पूर्ण दिशालाई उज्यालो पार्दै भगवान् रुद्र त्यसै लिङ्गमा अन्तर्धान हुनुभयो। शिवजीका दूतले रुद्रगणद्वारा सेवित च्यवन ऋषिलाई शिवको यानमा राखेर तुरुन्त शिवजीको लोकमा लगे। केही समयपछि अन्धक दैत्यको छोरो वीर चण्डले यो कुरा शुक्राचार्यबाट सुन्यो। कुरैकुराको प्रसङ्गमा त्यस राक्षसले यो लिङ्ग र तीर्थको माहात्म्य तथा च्यवन ऋषि अघि मुक्त भएका थिए भन्ने कुरा थाहा पायो ॥१५-२०॥

तपस्या गर्ने इच्छा भएको त्यस राक्षसले गुरुको उपदेश अनुसार खुसी हुँदै उग्रतीर्थमा पुगेर आनन्दसित स्नान गर्‍यो। चैत्र शुक्ल नवमीका दिन चण्डासुर नाम गरेको महाबली राक्षसले पूर्वोक्त विधिअनुसार यसै उग्रतीर्थको जलमा स्नान गर्‍यो। त्यस तीर्थमा स्नान गरेर चण्डासुरले पञ्चोपचार विधिद्वारा भक्तिपूर्वक जप, अर्चना र उत्सवका साथ यस लिङ्गको पूजा गर्‍यो। एक मुठ्ठी धूलो एकपटक मात्रै खाएर सधैँ सन्तोषी बनेर त्यस लिङ्गको अगाडि उँधोमुन्टो लगाउँदै त्यस राक्षसले तपस्या गर्‍यो। यसरी त्यस राक्षसले दश वर्षसम्म उग्र तपस्या गर्‍यो। त्यसपछि भगवान् शिवले लिङ्गबाट निस्किएर त्यस राक्षसलाई भन्नुभयो ॥२१-२५॥

---

४. विमुक्तश्च्यवन ! भवेः इति न.सं.पु.पाठः।
५. स्वभक्तिने इति न.सं.पु.पाठः।
६. कथ्यमानप्रसङ्गेन इति न.सं.पु.पाठः।
७. भक्ष्य इति न.सं.पु.पाठः।
८. महोग्रेण इति न.सं.पु.पाठः।

रुद्र उवाच

सन्तुष्टस्तव भक्त्याऽहं तस्माद्दास्ये वरं हि ते। वरं वरय मत्तस्त्वं त्वदीप्सितञ्च साम्प्रतम् ॥२६॥
उग्रेण तपसा यस्मान्मत्तीर्थे स्नानतो यतः। स्वनाम सदृशं चार्य ![९] कठोरं तप्तवान्मयि ॥२७॥

चण्डासुर उवाच

नमो रुद्राय देवाय देवानां पतये नमः। उग्राय सूग्ररूपाय चोग्रवरप्रदाय च ॥२८॥
त्रिलोकानां प्रभुत्वं मे सर्वोन्नतपराक्रमः। देवासुरैस्तथाचाऽन्यैरवध्यत्वं प्रदीयताम् ॥२९॥
द्रवन्तु प्रेक्ष्य मां[१०] सर्वे युद्धे वापि सुरासुराः। मत्पतत्त्रिप्रहारैस्ते भवन्तु च भयान्विताः[११] ॥३०॥
मन्नाम्ना तव भूतेश नामाद्यादि भवेत्[१२] प्रभो। चण्डेश्वर इति ख्यातं कृतार्थः स्यान्ततो ह्यहम् ॥३१॥

नेमुनिरुवाच

ओमिति च प्रतिश्रुत्य तिरोधानं ययौ शिवः। एतल्लिङ्गे तदा विप्र ! वरं दत्त्वा स सेविने[१३] ॥३२॥
चण्डोऽपि प्रययौ स्वर्गं योद्धुं तत्र वरान्वितः। युयोध स सुरैः सार्द्धं भृशं मिथो जयैषिभिः ॥३३॥
विद्राव्य तरसा देवान् सप्तलोकान् परिभ्रमन्। तेभ्यो धनानि सङ्गृह्य[१४] सप्तपातालमागमत् ॥३४॥
तत्रापि सोऽजयल्लोकान्प्रेतानपि च[१५] पन्नगान्। आदाय तद्धनं चण्डो[१६] मेदिनीतलमागमत् ॥३५॥
सर्वांश्च मेदिनीपालानजयदत्र विक्रमैः। कोऽपि नास्तीति योद्धुं म इति चिन्ताकुलोऽभवत् ॥३६॥
यस्माल्लब्धो वरः[१७] पूर्वं तेन समं हि युद्ध्यते। कृत्वेति मनसा चण्डो चाऽत्रैवमगमत्पुनः ॥३७॥
सम्पूज्य विधिवल्लिङ्गं प्रार्थयामास शङ्करम्। युद्धं देहि विभो ! मह्यं भवता सह नाऽपरैः ॥३८॥

---

शङ्करले भन्नुभयो – म तिम्रो भक्तिबाट सन्तुष्ट भएको छु, त्यसैले तिमीलाई म वर दिन्छु। अब मसित तिमीलाई जे इच्छा लाग्छ, त्यो वर माग किनभने तिमीले मेरो तीर्थमा स्नान गरेर उग्र तपस्या गऱ्यौ, मलाई उद्देश्य गरेर आफ्नो जस्तो नाउँ छ, त्यस्तै कठोर तपस्या गऱ्यौ ॥२६–२७॥

चण्डासुरले भन्यो – उग्र किसिमको वर दिने उग्रभन्दा पनि उग्र रूप भएका देवताका पति रुद्रदेवलाई नमस्कार छ। म तीनै लोकको अधिपति हुन पाऊँ, मेरो सबैभन्दा ठूलो पराक्रम होस्, मलाई देवता, राक्षस र अरू कसैले पनि मार्न नसकून्– यही वर दिनुहोस्। लडाईंमा मलाई देखेर मेरो बाणको प्रहारले डराउँदै देवता र राक्षसहरू सबै भागून्। हे भगवान् शङ्कर ! आजदेखि मेरो नामबाट हजुरको चण्डेश्वर भन्ने नाम रहोस्। त्यति भयो भने म कृतार्थ हुनेछु ॥२८–३१॥

नेमुनिले भन्नुभयो – हे ब्राह्मण ! हुन्छ भनी भक्तलाई वर दिएर भगवान् शिव यसै लिङ्गमा अन्तर्धान हुनुभयो। वर पाएपछि चण्डासुर पनि युद्ध गर्नका लागि स्वर्ग गयो। जित्न चाहने देवताहरूका साथ उसले खूबसित युद्ध गऱ्यो। देवताहरूलाई जोडसित हराएर सात लोक घुम्दै तिनीहरूबाट सम्पत्ति लिएर त्यो पाताल गयो ॥३२–३४॥

त्यहाँ पनि उसले सबै प्राणीहरू, प्रेतहरू र सर्पहरूलाई जित्यो। त्यसपछि त्यो चण्डासुर तिनीहरूबाट सम्पत्ति लिएर पृथ्वीतलमा आयो। उसले आफ्नो पराक्रमद्वारा सम्पूर्ण राजाहरूलाई जित्यो, त्यसपछि मसँग लड्ने योद्धा अब कोही रहेन भनेर चिन्तित भयो। जसबाट अघि वर पाएको थिएँ, अब त्यसैसित लड्छु भन्ने मनमा लिएर चण्डासुर त्यसै ठाउँमा गयो। उसले विधिपूर्वक लिङ्गको पूजा गरेर भगवान् शङ्करसित प्रार्थना गऱ्यो – हे प्रभु ! मलाई हजुरसित लड्ने अवसर दिनुहोस्, अरूसित होइन ॥३५–३८॥

---

९. ते नाम्ना सदृशेनार्य इति न.सं.पु.पाठः।
१०. मां प्रेक्ष्य दुद्रुवुः इति न.सं.पु.पाठः।
११. चापि विभीषणान्विताः इति न.सं.पु.पाठः।
१२. चाद्यादि भवतु इति न.सं.पु.पाठः।
१३. स भक्तिने इति न.सं.पु.पाठः।
१४. अवलम्ब्य वसून् तेभ्यः इति न.सं.पु.पाठः।
१५. सोऽजयल्लोकान्प्रेतगणांश्च इति न.सं.पु.पाठः।
१६. तद्वसूंश्चण्डः इति न.सं.पु.पाठः।
१७. यस्माल्लब्धवरम् इति न.सं.पु.पाठः।

त्वत्प्रसादाद् गतो योद्धुं त्रैलोक्ये च मया विभो। योद्धा प्राप्तो न कुत्रापि तस्मादत्रागतस्त्वयि[१८] ॥३९॥
करौ कण्डूयमानौ मे युद्धलालसमानिनः। भवता सह योद्धव्यं नान्यैः समुत्सहे क्वचित् ॥४०॥

नेमुनिरुवाच

श्रुत्वा च पौरुषं वाक्यं लिङ्गात्समुद्भूतो हरः। क्रोधेन मूर्च्छितो विप्र भीमरूपभयावहः ॥४१॥
प्रलयानलसङ्काशः शूलमुद्यम्य सत्त्वरम्। युयोध तेन सार्द्धञ्च त्रासयन् सर्वजीविनः ॥४२॥
शूलपाणिं समुद्दिश्य चण्डस्तीक्ष्णशरैस्त्रिभिः। जघान त्वरितं रुद्रं सिंहनादं ननाद च ॥४३॥
अपतत्तत्कराच्छूलं भुवि क्षिप्रं हरः पुनः। जग्राह लघु तच्छूलं हन्तुमुद्यतवाँश्च तम् ॥४४॥
चिक्षेप तमुरोदेशे शूलं रुद्रो भृशं तदा। स शूरश्च व्रणांकोऽसौ पपात भुवि तत्क्षणात् ॥४५॥
अवदत्तत्र चण्डोऽसौ शिवशिवेति शङ्करम्। तन्नामग्रहणाद् भक्त्या मृतो नैव विरूपदृक् ॥४६॥
क्षणं यथा समुत्तीर्य प्रतस्थौ युद्धलालसः। भक्त्याभ्यर्च्य पुनर्लिङ्गं प्रार्थितवान् वरं मुहुः ॥४७॥
ततश्च प्रमथाश्चात्र समागत्य हिमालयात्। शस्त्रास्त्रेभ्यश्च तं रुद्ध्वा[१९] चिक्षिपुर्युगपद् भृशम् ॥४८॥
ववृषुश्च[२०] शरासारान् तस्योपरि समन्ततः। पुनर्जघ्नुश्च शस्त्रास्त्रैः प्रमथास्तमितस्ततः ॥४९॥
आदाय गण्डशैलान्[२१] स दुद्राव प्रमथान् प्रति। चिक्षेप त्वरितं चण्डः प्रमथेषु च[२२] तच्छिलाः ॥५०॥
उत्पाट्य शैलशृङ्गं[२३] स चण्डः क्रोधप्रमूर्च्छितः। अभिदुद्राव तत्सैन्यं समुद्यतकराचलः ॥५१॥
दुद्रुवुः प्रमथाः शीघ्रं तमालोक्य दिशो दश। सम्प्रेक्ष्य मत्तमातङ्गं मृगा इव भयाद्वने ॥५२॥

---

हजुरको कृपाले तीनै लोकमा युद्ध गर्न गएँ, कतै पनि मसँग लड्ने योद्धा प्राप्त भएन। यसैले हजुरसित आएँ। युद्धको चाहनाले मात चढेको हुँदा मेरा दुईवटा हात चिलाएका छन्, हजुरसित लडाईं गर्छु, अरू कसैसित पनि गर्न चाहन्न ॥३९-४०॥

नेमुनिले भन्नुभयो – हे ब्राह्मण ! यस्तो कठोर वाक्य सुनेर शिवजी लिङ्गबाट उत्पन्न हुनुभयो र डरलाग्दो भएर क्रोधले मूर्च्छित हुनुभयो। प्रलयकालीन अग्निजस्तै भएका शिवजीले तुरुन्त त्रिशूल उठाएर सम्पूर्ण प्राणीहरूलाई त्रास पैदा गर्दै त्यस दैत्यसित युद्ध गर्नुभयो। शिवजीलाई ताकेर चण्डासुरले तीनवटा तीखा बाणले तुरुन्त हिर्कायो र सिंहनाद गर्‍यो। त्यस दैत्यको हातबाट फेरि शूल बज्रियो। त्यसपछि फेरि शिवजीले त्यसलाई मार्ने विचारले तुरुन्त त्रिशूल समात्नुभयो। भगवान् रुद्रले त्यसको छातीमा जोडसित त्रिशूल प्रहार गर्नुभयो। त्यो वीर राक्षस घायल भएर तुरुन्तै भुईंमा पछारियो ॥४१-४५॥

हे विरूपाक्ष ! त्यस ठाउँमा यस चण्डले भगवान् शङ्करलाई शिव शिव भनेर बोलायो। भक्तिपूर्वक भगवान्को नाम लिएको हुँदा त्यो राक्षस मरेन। एकछिनपछि उठेर फेरि लड्ने इच्छाले लिङ्गको पूजा गरेर बारम्बार प्रार्थना गर्‍यो। त्यसपछि हिमालयबाट प्रमथ गणहरू त्यहाँ आए। त्यस चण्डलाई रोकेर त्यसमाथि एकैचोटि शस्त्र तथा अस्त्रहरू प्रहार गरे। प्रमथ गणहरूले त्यस चण्डासुरमाथि चारैतिरबाट बाणहरूको वर्षा गरे। त्यसलाई यताउतिबाट शस्त्र अस्त्रले फेरि पनि हाने। त्यो चण्डासुर ढुङ्गाहरू लिएर प्रमथ गणहरूप्रति जाइलाग्यो। तुरुन्त त्यसले प्रमथगणहरूमाथि ढुङ्गा फ्याँक्यो। त्यो चण्डासुर रीसले मूर्च्छित हुँदै पहाडको थुम्को उखेलेर हातमा लिई प्रमथ आदि गरिएको गणहरूतर्फ जाइलाग्यो। जसरी वनमा उन्मत्त भएको हात्तीलाई देखेर मृगहरू डरले भाग्छन्, त्यसरी नै त्यस चण्डासुरलाई देखेर प्रमथ आदि गरिएका गण दशै दिशातिर तुरुन्त दगुरे ॥४६-५२॥

---

१८. चातश्चात्रगतस्त्वयि इति न.सं.पु.पाठः।
१९. शस्त्रास्त्राणि च तं रुध्य इति न.सं.पु.पाठः।
२०. ववर्षुश्च इति न.सं.पु.पाठः।
२१. गण्डशैलान् इति न.सं.पु.पाठः।
२२. प्रमथेभ्यश्च इति न.सं.पु.पाठः।
२३. शैलसानुम् इति न.सं.पु.पाठः।

युयुधुः प्रमथा भूयः सम्भूय तेन वै समम्। तत्सैन्येष्वसुरश्चण्डः शैलशृङ्गं[२४] समाक्षिपत् ॥५३॥
यूथीभूय ततः शैवा चाऽब्रुवन् शूलिनं पुनः। विमृश्य च मिथो विप्र ! तस्य नाशस्य कारणम् ॥५४॥

प्रमथा ऊचुः

एतल्लिङ्गमसौ पापः सम्पूज्य लब्धवान् वरम्। ततो लब्धवरश्चण्डोऽभवत् त्रैलोक्यजिद्विभो ॥५५॥
वरलाभाद् हि[२५] ते चण्डो युध्यति भवता समम्। अनेन च समं योद्धुं भुवि को विद्यते प्रभो ॥५६॥
तस्मात् साक्षाद् त्वया लिङ्गं द्रुतमुत्सार्यतां भुवः[२६]। अदर्शनाद् भवं तं स क्षीणवरो भविष्यति ॥५७॥

नेमुनिरुवाच

तथ्यं कृत्वा तदा रुद्रः प्रमथानां मुखेरितम्। अन्तर्दधे भुवि क्षिप्रं स्वतनुना समं विभुः ॥५८॥
असृजत् प्रमथानीके शरासारं समन्ततः। तमुद्दिश्याशु शस्त्रास्त्रैर्जघान च रुषा भृशम् ॥५९॥
असहच्च ततश्चण्डो बाणवृष्टिं गणेरिताम्। समुद्यम्य गदां क्रोधादभिदुद्राव तान् भृशम् ॥६०॥
ततस्तु गदया चण्डः प्रमथानीकमाशु च। अभिद्रुत्य च तान् देवान् कारयामास तत्क्षणात्[२७] ॥६१॥
चण्डगदाप्रहारेण रुधिराक्तकलेवराः[२८]। दुद्रुवुः प्रमथा भीत्या हिमवदद्रिगह्वरम्[२९] ॥६२॥
ततोऽपश्यद्दिशः सर्वा निरातङ्काः सुरैस्तदा। अन्वेषयद् हरञ्चण्डो योद्धुं तेन समं पुनः ॥६३॥
व्यक्ताङ्गेन समं लिङ्गं तिरोदधे क्षितौ द्रुतम्। अधावत्सिंहनादेन प्रेक्ष्याऽन्तिकं तमर्चितुम् ॥६४॥
भो भो विभो महेशान ! त्रिभुवनेश्वरोऽस्यपि। त्यक्त्वा युद्धं मया सार्द्धं पलायसे भवान् कुतः ॥६५॥

---

फेरि प्रमथगण जम्मा भएर त्यस चण्डासुरसित युद्ध गरे। चण्डासुरले पनि तिनीहरूमाथि पहाडका ढिस्काहरू फ्याँक्यो। त्यसपछि एकत्रित भएका शिवका गणहरूले परस्पर सल्लाह गरेर शङ्करलाई त्यसको बधको रहस्य बताए ॥५३-५४॥

प्रमथगणले भने – हे प्रभु ! त्यस पापी चण्डले त्यस लिङ्गको पूजा गरेर वर पाएको छ। यसैले गर्दा यो स्वर्ग, मर्त्य र पाताल तीनै लोकलाई जित्न समर्थ भएको छ। हजुरबाट वर पाएको हुँदा चण्डासुर हजुरसँग नै लड्न तयार भएको छ। हे प्रभु ! योसँग लड्ने संसारमा कोही पनि छैन। त्यसैले हजुरले यो लिङ्गलाई पृथ्वीबाट हटाउनुहोस्, शङ्करलाई नदेखेपछि यसले पाएको वर घटेर जानेछ ॥५५-५७॥

नेमुनिले भन्नुभयो – प्रमथगणहरूले भनेको वचनलाई सत्य सम्झिएर भगवान् रुद्र आफ्नो लिङ्गका साथै तुरुन्त पृथ्वीबाट अन्तर्धान हुनुभयो। रीसले मूर्च्छा परेको त्यस चण्डले चारैतिरबाट प्रमथगणहरूमाथि बाणहरूको वृष्टि गऱ्यो। प्रमथगणलाई ताकेर तुरुन्त रीसले जोडसित शस्त्र अस्त्रहरू प्रहार गऱ्यो। प्रमथगणहरूले हिर्काएको बाणको वर्षालाई सहेर रीसले गर्दा उज्याउँदै चण्डासुर प्रमथगणको सेनामाथि वेगपूर्वक जाइलाग्यो र प्रमथगणलाई तितरबितर पाऱ्यो ॥५८-६०॥

त्यसपछि चण्डासुरले गदा लिएर प्रमथगणहरूमाथि तुरुन्त प्रहार गऱ्यो। ती देवता र तिनीहरूका सेनालाई पनि तितरवितर तुल्यायो। चण्डको गदाको प्रहारले गर्दा रक्ताम्य शरीर भएका प्रमथगणहरू डरले हिमालय पर्वतको गुफातिर भागे। त्यसपछि चण्डले सम्पूर्ण दिशाहरूमा खोजी गर्दा देवता नभएको पायो र उसले लड्नका लागि भगवान् शङ्करको खोजी गऱ्यो। प्रकट भएको अङ्गका साथै शिवलिङ्ग पृथ्वीमा अन्तर्धान भयो भन्ने विचार गरेर त्यो चण्ड सिंहनाद गर्दै लिङ्गको पूजा गर्नका लागि दौडियो। हे भगवान् महेश्वर ! तीनै लोकका मालिक भएर पनि मसित लड्न छोडेर हजुर कता भाग्दै हुनुहुन्छ ? ॥६१-६५॥

---

२४. शैलसानुम् इति न.सं.पु.पाठः।
२५. लब्धवराद्धि इति न.सं.पु.पाठः।
२६. भवाँल्लिङ्गं समुपसर्प्यतां भुवि इति न.सं.पु.पाठः।
२७. तद्वाह्निन्यामितस्ततः इति न.सं.पु.पाठः।
२८. रुधिरक्लिन्नदेहिनः इति न.सं.पु.पाठः।
२९. भीष्माद्धिमवदद्रिगह्वरम् इति न.सं.पु.पाठः।

इत्येतद्वचनं श्रुत्वा तत्कालं तेन चोदिता। विनिर्ययौ बिलाद्देवी चण्डरूपा भयङ्करी ॥६६॥
भीमा चतुर्भुजैर्युक्ता चण्डिका चण्डविक्रमा। ललज्जिह्वा त्रिनेत्रा सा सर्वाभरणभूषिता ॥६७॥
प्रेतस्था च महोग्रास्या खड्गचर्मकरोद्यता। रक्ता देहप्रभाश्यामा सा[३०] क्रोधेन प्रमूर्च्छिता ॥६८॥
व्याजहार पुनश्चण्डो विहस्य त्वरितं तदा। मत्वा पराक्रमैर्हीनं स्त्रीरूपं विदधे विभुः ॥६९॥
स्त्रीषु न प्रहरेच्छस्त्रैः कृत्वेति वा महाविभुः। तथापि प्रहरिष्यामि चास्त्रं भवति ! ते नमः ॥७०॥

देव्युवाच

किं कुरुषेऽधुना मूढ ममाग्रेऽसत्यवल्गनम्[३१]। दर्शयस्व बलं स्वं मे यदि चण्ड ! पराक्रमी ॥७१॥
मां न जानीहि हे मूढ ! दुर्बलां केवलां स्त्रियम्[३२]। अनेन मूढ ! रूपेण जगद्विनाशितं पुरा।
त्वां सान्वयं ध्रुवं हत्वा पास्यामि त्वदसृङ् मुदा ॥७२॥
ततो देवा मुदा स्वर्गे स्थास्यन्ति सुचिरं भृशम्।

नेमुनिरुवाच

ततो युद्धमभूत्तीव्रं सर्वलोकभयङ्करम् ॥७३॥
दिव्यवर्षशतं व्याप्य देव्याश्चण्डस्य वै भृशम्। ततो युयुधतुस्तौ तु प्रहारैरुपसर्पणैः ॥७४॥
गण्डशैलैश्च शस्त्रास्त्रैः प्रहरन्तौ च सानुभिः। क्रोधेन मूर्च्छितश्चण्डश्चाभिद्रुत्य धनुष्करः ॥७५॥
वाणवर्षञ्चकाराशु देव्युपरि समन्ततः। खड्गोद्यता तदा देवी प्रगृह्य तच्छिरोरुहम् ॥७६॥
सव्यकरेण खड्गेन चाच्छिनत्तस्य कन्धराम्। खड्गकपालहस्तां तां तद्रक्तोक्षितविग्रहाम् ॥७७॥
तुष्टुवुर्देवताः प्रेक्ष्य भीमास्यां क्रोधरूपिणीम्। चण्डिकायै महादेव्यै चण्डरूपे नमोऽस्तु ते ॥७८॥

---

त्यस चण्डले भनेको यो बोली सुनेर चण्डरूप लिएकी डरलाग्दी देवी तुरुन्त छिद्रबाट बाहिर निस्कनुभयो। उहाँ डरलाग्दो हुनुहुन्थ्यो, उहाँका चार हात थिए, डरलाग्दो पराक्रमले युक्त भएकी चण्डिकाको जिब्रो ज्यादै चञ्चल थियो, उहाँका तीन आँखा थिए र सम्पूर्ण गहना लगाउनुभएको थियो। चण्डिका प्रेतमाथि बस्नुभएको थियो, डरलाग्दो मुख थियो, हातमा तरवार र छाला लिनुभएको थियो, रातो र कालो मिसिएको उहाँको कान्ति थियो, चण्डिका क्रोधले मूर्च्छित हुनुभएको थियो। त्यसपछि फेरि चण्डले हाँसेर तुरुन्त भन्यो – आफूलाई निर्धो ठानेर भगवान्ले स्वास्नी मानिसको रूप लिनुभएछ। अथवा भगवान् शङ्करले स्वास्नी मानिससित यसले शस्त्र प्रहार गर्दैन भनेर यो रूप लिनुभएको होला, तर म शस्त्र प्रहार गर्छु। हे देवी ! हजुरलाई नमस्कार छ ॥६६–७०॥

देवीले भन्नुभयो – हे मूर्ख ! अहिले मसित किन बकबक गर्छस् ? हे चण्ड ! यदि तँ पराक्रमी छस् भने मलाई आफ्नो बल देखा। हे मूर्ख ! तँ मलाई खाली निर्धो आइमाई नठान्। हे मूर्ख ! यसै रूपले अघि संसारको प्रलय गरेकी थिएँ। सपरिवार तँलाई मारेर तेरो रगत आनन्दसित पिउनेछु, त्यसपछि देवताहरू स्वर्गमा गएर आनन्दसित धेरै समयसम्म बस्न पाउनेछन् ॥७१–७३॥

नेमुनिले भन्नुभयो – त्यसपछि चण्ड र देवीको सय वर्षसम्म सम्पूर्ण प्राणीलाई त्रास पैदा गर्ने ठूलो युद्ध भयो। त्यसपछि ती दुईले बाण, थुम्का, शस्त्र, अस्त्र फ्याँकाफ्याँक गरी युद्ध गरे। रीसले मूर्छा परेको त्यस चण्डले हातमा धनुष लिएर दौडदै गएर देवीमाथि चारैतिरबाट तुरुन्त बाण वर्षा गऱ्यो। तरवार लिएकी देवीले पनि दैत्यको शिरमा समातेर दाहिने हातको तरवारले त्यसको घाँटी छिनाल्नुभयो। तरवार र टाउको हातमा लिएकी, दैत्यको रगले भिजेकी, डरलाग्दो मुख भएकी र क्रुद्ध चण्डिकालाई देखेर देवताहरूले स्तुति गरे ॥७४–७८॥

---

३०. श्यामप्रभादेहा तत् इति न.सं.पु.पाठः।
३१. न कथ्यसेऽधुना मूढ मेऽग्रे वितथवल्गणम् इति न.सं.पु.पाठः।
३२. त्वं स्त्रीमबलाञ्च केवलाम् इति न.सं.पु.पाठः।

चण्डदैत्यमहापापप्रणाशिन्यै नमो नमः । एवं स्तुत्वा सुरा देवीं पुष्पवर्षैः समर्हयन् ॥७९॥
ययुः स्वर्गं पुनर्विप्र ! हर्षपूरितमानसाः । सा देवी तद्बिले शीघ्रं विलीना च तदा पुनः ॥८०॥
गूढरूपा च साऽद्यापि भवेच्चण्डेश्वरी द्विज । अद्यापि च गणश्रेष्ठोऽभवच्चण्डो महाबली ॥८१॥
देव्याः खड्गप्रपूताङ्गोऽभवद् रुद्रप्रसादतः । अत्रैव पूजितं[33] लिङ्गं धनेश्वर इति श्रुतम् ॥८२॥
उग्रतीर्थे सुखं स्नात्वा भक्त्या विरूपदृक् पुनः ।
माहात्म्यमेतत् कथितं च गुह्यं[34] चण्डेश्वरस्यार्य भवत्समक्षे[35] ।
उग्राख्यतीर्थस्य कृता[36] प्रशंसा भक्तोऽसि तीर्थस्य पिनाकिनश्च[37] ॥८३॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां चण्डेश्वरोग्रतीर्थयोर्माहात्म्यं नाम पञ्चनवतितमोऽध्यायः ॥९५॥

---

अत्यन्त रिसाहा स्वरूप भएकी हे महादेवी ! चण्डिके अजुरलाई नमस्कार छ। चण्ड नाम गरेको दैत्यरूपी पापलाई नाश गर्ने परमेश्वरीलाई नमस्कार छ, नमस्कार छ। यसरी देवताहरूले स्तुति गरेर देवीलाई फूल वर्षा गरे। हे ब्राह्मण ! त्यसपछि प्रसन्न चित्त भएर देवताहरू स्वर्ग गए। हे ब्राह्मण ! ती देवी तुरुन्त छिद्रमा विलीन हुनुभयो, तिनको रूप आज पनि गुप्त छ। चण्डेश्वरी भनेकी तिनै देवी हुनुहुन्छ। देवका खड्गको प्रहारबाट पवित्र अङ्ग भएको महाबली चण्ड रुद्रको कृपाले गर्दा आज पनि भगवान् शिवको गणमा श्रेष्ठ भएर रहेको छ। हे विरूपाक्ष ! उग्रतीर्थमा भक्तिपूर्वक स्नान गरेर धनेश्वर नामले प्रसिद्ध भएको शिवलिङ्गको पूजा गर ॥७९-८२½॥

हे सज्जन विरूपाक्ष ! मैले यो गुप्त चण्डेश्वरको माहात्म्य बताएँ। शिवजीको तीर्थको बारेमा तिम्रो ठूलो भक्ति छ, त्यसैले मैले तिमीलाई उग्रतीर्थको माहात्म्य पनि बताएँ ॥८३॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा चण्डेश्वर र उग्रतीर्थको माहात्म्यनामक पन्चान्नब्बेऔं अध्याय पूरा भयो।

---

३३. पूज्यताम् इति न.सं.पु.पाठः ।
३४. एतच्च गुह्यं कथितं माहात्म्यम् इति न.सं.पु.पाठः ।
३५. मया विरूपदृक् इति न.सं.पु.पाठः ।
३६. पुनः इति न.सं.पु.पाठः ।
३७ यस्माद्गिरिशे च तीर्थे इति न.सं.पु.पाठः ।

# षण्णवतितमोऽध्यायः

## धनेश्वरशिवलिङ्गमहिमा

### स्कन्द उवाच

उग्रतीर्थे ततः स्नात्वा चण्डेश्वरं प्रपूज्य च। उग्रेण तपसा युक्तो विरूपाक्षोऽभवत्पुरा ॥१॥
माघकृष्णशुभे पक्षे षष्ठ्यां पूजितवान् हरम्। धनेश्वरं महालिङ्गं भक्त्या पञ्चोपचारकैः ॥२॥
सम्पूज्य विधिवल्लिङ्गं तन्माहात्म्यं च नेमुनिम्। पप्रच्छ च तदुपत्तिं[1] विरूपाक्षो घटोद्भव ॥३॥

### विरूपाक्ष उवाच

नेमुने श्रोतुमिच्छामि चैतल्लिङ्गस्य सम्भवम्। धनेश इति नामोक्तं[2] भवता मेऽधुना विभो ॥४॥
केन प्रकाशितं लिङ्गं धनेश्वरं मुनीश्वर। तत्पूजनाद्विभोः केन प्रलब्धं किं फलं कदा ॥५॥

### नेमुनिरुवाच

भृगुणा च पुरा तप्तं व्याप्य शतं समा द्विज। ततः समुद्भूतञ्चैतल्लिङ्गं तदा तदग्रतः ॥६॥
एतस्माच्च वरं लब्ध्वा जातश्चिरञ्जीवी[3] भृगुः। प्रवरोऽसौ मुनीनाञ्चाऽद्यापि चैव विरूपदृक् ॥७॥
आसीत्कश्चित्पुरा वैश्यः शिवदास इति श्रुतः। पूर्वजन्मन्यदानात् स दरिद्रोऽभून्निरन्तरम् ॥८॥
गोष्ठीभिर्वर्जितोऽसौ च पत्नीसुतादिभिस्तथा। श्वशुरभ्रातृभिर्नित्यं दरिद्रो दुःखितो भृशम् ॥९॥
सन्त्यज्य स्वकुलं देशं विरक्तो निर्गतः पुरात्। देशाद्देशान्तरं भ्रान्त्वा[4] चाऽर्थलुब्ध इहाऽऽगतः ॥१०॥
क्वचित्क्रतुमुनिं प्राप्य चाऽपृच्छत्तं धनोद्यमम्। व्याजहार ऋतुस्तस्मै धनहेतोर्विरागिणे[5] ॥११॥

---

## अध्याय – ९६

### धनेश्वर शिवलिङ्गको महिमा

कार्तिक स्वामीले भन्नुभयो – अघि विरूपाक्षले उग्रतीर्थमा स्नान गरेर चण्डेश्वरको पूजा गरी उग्र तपस्या गरेका थिए। माघ कृष्ण शुक्लपक्ष षष्ठीका दिन उनले भक्तिपूर्वक पञ्चोपचार विधिले धनेश्वर महादेवको महालिङ्गको पूजा गरे। हे अगस्त्य मुनि ! विरूपाक्षले विधिपूर्वक लिङ्गको पूजा गरिसकेपछि उनले नेमुनिलाई त्यस लिङ्गको उत्पत्तिको बारेमा प्रश्न गरे ॥१–३॥

विरूपाक्षले भने – हे नेमुनि ! धनेश्वरको बारेमा अहिले हजुरले मलाई जो बताउनुभयो, त्यस लिङ्गको उत्पत्तिका बारेमा म सुन्न चाहन्छु। त्यस लिङ्गलाई कसले प्रकाशित गर्‍यो ? त्यस लिङ्गको पूजा गरेर कसले कहिले के फल प्राप्त गर्‍यो ? ॥४–५॥

नेमुनिले भन्नुभयो – हे ब्राह्मण ! अघि त्यस ठाउँमा भृगु ऋषिले सय वर्षसम्म तपस्या गर्नुभएको थियो। त्यसपछि उहाँको अगाडि यो लिङ्ग प्रकट भएको हो। हे विरूपाक्ष ! यसै लिङ्ग भएको तीर्थबाट वर प्राप्त गरेर अहिले पनि भृगु चिरञ्जीवी भएर बस्नुभएको छ। पवित्रहरूमा पनि उहाँ अझ पवित्र हुनुहुन्छ। अघि शिवदास नाम गरेको कुनै वैश्य थियो। पूर्वजन्ममा दान नगरेको हुँदा त्यो सधैं दरिद्र भयो। साथीहरूले उसलाई छोडे, पत्नी, छोरा, ससुरा, भाइ आदिले पनि उसलाई त्यागिदिए। दरिद्र भएको हुनाले ऊ अत्यन्त दुःखित भयो। त्यसपछि ऊ आफ्नो कुल तथा देशलाई छोडेर विरक्त भई नगरबाट निस्कियो। अर्थको कामनाले एक देशबाट अर्को देश घुम्दै त्यो यहाँ आइपुग्यो। कुनै धन कमाउन लागेका ऋतु नाम गरेका मुनिलाई भेटेपछि उसले सोध्यो। ऋतुपनि विरक्त भएको त्यस पुरुषलाई भन्न लागे ॥६–११॥

---

१. तमुद्भुतम् इति न.सं.पु.पाठः।
२. विख्यातः इति न.सं.पु.पाठः।
३. चिरञ्जीव्यभवद् इति न.सं.पु.पाठः।
४. भ्राम्य इति न.सं.पु.पाठः॥
५. धनहेतोर्विरक्तिने इति न.सं.पु.पाठः।

निर्धनश्चेद्भवानत्र भक्त्याराधय शङ्करम् । स ते दास्यति पूर्णं स्वं वाञ्छितञ्च विदां वर ![६] ॥१२॥
आकर्ण्य तद्वचो वैश्य ऋतं मत्त्वा तदाशु च । चकाराऽत्र तपस्तीव्रं द्वादशाब्दं धनात्मना ॥१३॥
क्षुत्पिपासां परित्यज्य पञ्चाक्षरं जजाप सः । भक्त्या लिङ्गं समभ्यर्च्य श्रद्धया[७] स्नातकोऽनिशम् ॥१४॥
राधकृष्णचतुर्दश्यां सम्पूजिते महानिशि । एतल्लिङ्गात्समुद्भूतो व्यक्तरूपो महेश्वरः ॥१५॥
उन्मील्य नेत्रे स्वेऽपश्यत्तुष्टाव च परिक्रमन् । ननाम दण्डवद् भक्त्या चाऽष्टाङ्गं भुवि पातयन् ॥१६॥
आविर्भूतो हरो व्यक्तः पूर्णचन्द्रो यथार्णवे । उवाच वचनं रुद्रो भक्ताय निर्धनाय च[८] ॥१७॥

रुद्र उवाच

वरं वरय वैश्यार्य मत्तो[९] वाञ्छसि यद् वद । दास्याम्यहञ्च तत्सर्वं तेऽपि लोकसुदुर्लभम् ॥१८॥
तपसा ते कठोरेण प्रीतोऽहमधुना भृशम् । निर्वाणं वाऽपि भूतिं वा भक्त ! मां याचतां द्रुतम् ॥१९॥

वैश्य उवाच

निर्धनोऽहं महादेव ! प्राग्धनं देहि मे बहु । नृपत्वञ्च ततो देहि भोक्ष्यामि तद्यथेप्सितम् ॥२०॥
अन्ते ते सेवको भूत्वा विचरिष्यामि निर्भरम् । त्यक्तः स्वजातिभिर्लोकैर्दुःखदग्ध इति प्रभो ॥२१॥
धनेश्वर इति ख्यातो भवत्विति भवान् पुनः । एतल्लिङ्गं हि याचेऽहं त्वामेनञ्च वरं विभो ॥२२॥

नेमुनिरुवाच

ओमिति च प्रतिश्रुत्य चैतल्लिङ्गं तिरोदधे । दत्त्वा तस्मै वरं रुद्रस्तदीप्सितं धनं प्रभुः ॥२३॥
सोऽप्याययौ गृहं वैश्यः पूर्णमनोरथो द्विज । बहुधनं समादाय हर्षप्रफुल्लमानसः ॥२४॥

---

तपाईं यदि गरीब हुनुहुन्छ भने यस ठाउँमा बसेर भगवान् शङ्करको आराधना गर्नुहोस् । उहाँले तपाईंलाई इच्छा अनुसारको पूर्ण सम्पत्ति दिनुहुनेछ । त्यस वैश्यले ती मुनिले भनेको वचन सत्य ठानेर धन प्राप्त गर्ने इच्छाले बाह्र वर्षसम्म यहाँ बसेर तपस्या गऱ्यो । उसले भोक, प्यास सबै छोडेर पञ्चाक्षरी मन्त्र जप गऱ्यो । स्नान गरेर तीनै किसिमका भक्तिद्वारा उसले शिवलिङ्गको पूजा गऱ्यो ॥१२–१४॥

वैशाख कृष्ण चतुर्दशीको महारात्रिमा पूजा गरिसकेपछि त्यस लिङ्गबाट भगवान् शङ्कर प्रकट हुनुभयो । उसले आफ्ना आँखा खोलेर हेऱ्यो र प्रसन्न भयो । त्यसपछि परिक्रमा गर्दै उसले आठै अङ्ग भूमिमा झुकाएर दण्डवत् प्रणाम गऱ्यो । समुद्रमा पूर्ण चन्द्रमा प्रकट भएजस्तै उसका अगाडि रुद्र प्रकट हुनुभयो र त्यस दरिद्र भक्तलाई मीठो भाषामा भन्नुभयो ॥१५–१७॥

शङ्करले भन्नुभयो – हे वैश्य ! तिमी जे चाहन्छौ, त्यो वर मसित माग । सबै प्राणीहरूले प्राप्त गर्न नसक्ने सबै वर म तिमीलाई दिन्छु । हे भक्त ! तिम्रो कठोर तपस्याबाट म अहिले अत्यन्त प्रसन्न भएको छु । मुक्ति वा ऐश्वर्य जे चाहन्छौ, त्यो तुरुन्त माग । हे महादेव ! म गरीब छु, त्यसैले पहिले मलाई धेरै धन दिनुहोस् । त्यसपछि राजलक्ष्मी दिनुहोस्, इच्छा अनुसार भोग गर्नेछु । अन्त्यमा आफ्नो जातिका मानिसहरूले त्यागेपछि दुःखित भएर हजुरको सेवक हुँदै आनन्दसित घुम्नेछु । हजुरको यो लिङ्ग धनेश्वर नामले प्रसिद्ध होस् । हे प्रभु ! म हजुरसित यो पनि वर माग्छु ॥१८–२२॥

नेमुनिले भन्नुभयो – भगवान् शङ्कर पनि हुन्छ भनेर त्यस वैश्यलाई उसले चाहेअनुसारको धन दिई त्यसै दिन अन्तर्धान हुनुभयो । हे ब्राह्मण ! त्यसपछि मनोरथ पूर्ण भएको त्यो वैश्य पनि हर्षले चित्त गद्गद बनाएर धेरै सम्पत्ति लिई घर आयो ॥२३–२४॥

---

६. यदिच्छितञ्च विद्वर इति न.सं.पु.पाठः ।
७. त्रिविधैः इति न.सं.पु.पाठः ।
८. निःस्वाय भक्तिने मृदु इति न.सं.पु.पाठः ।
९. यत्त्वम् इति न.सं.पु.पाठः ।

यैर्यैस्त्यक्तः पुरा वैश्यो गोत्रैर्भृत्यैः स्वबान्धवैः। तिष्ठन्ति स्म हि तद्गेहे ते ते चाऽवन्तिकापुरे[१०] ॥२५॥
सार्वभौमपतिर्भूत्वा ततो वैश्योऽन्वयैः समम्। भुनक्ति स्म सुखं भोग्यं यावज्जीवं मुदान्वितः ॥२६॥
देहान्ते च ततोऽभूत्स रुद्रस्यानुचरः सुखी। प्रमथानां गणो भूत्वा प्रतिष्ठति शिवान्तिके ॥२७॥
धनेश्वरं येऽर्चयन्ति भक्त्या च विधिपूर्वकम्। धनिनस्ते भवेयुश्च सत्यमेतन्न संशयः ॥२८॥
इह लोके सुखं भुक्त्वा देहान्ते स प्राप्नुयात् शिवम्[११]। आजन्म स्वकृतैः पापैस्तत्क्षणान्मुच्यते हि सः ॥२९॥
अतो वारुणदेशे च गच्छ विरूपदृक् पुनः। धनुषां षट्सहस्रे च यत्राऽऽस्ते विकटेश्वरः ॥३०॥
द्रोणभूभृदधोभागे नित्यं विराजते विभुः। पुष्पतीर्थेन सार्द्धञ्च रुद्रवत्याश्च पश्चिमे ॥३१॥
स्नात्वा च तज्जले भक्त्या तमर्चय यथाविधि। विकटेशं महालिङ्गं ममाऽऽज्ञया विरूपदृक् ॥३२॥
एतन्माहात्म्यञ्च धनेश्वरस्य प्रोक्तञ्च तुभ्यं भविकं मयाऽऽर्य।
पृष्टो यतोऽहं विनयात्[१२] त्वया वै लिङ्गस्य नृणां विभवप्रदस्य ॥३३॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहाम्ये विरूपाक्षतीर्थयात्रायां धनेश्वरमाहात्म्यं नाम षण्णनवतितमोऽध्यायः ॥९६॥

---

अघि जुन-जुन कुल, नोकर र आफ्ना दाजुभाइले त्याग गरेका थिए, तिनीहरू उज्जयिनी नगरको त्यसै घरमा प्रजाजस्तै भएर बस्न थाले। त्यसपछि त्यस वैश्यले चक्रवर्ती राजा भएर आफ्ना वंशहरूको साथमा जीवनभर सुखपूर्वक सहर्ष राज्यभोग गऱ्यो। शरीरत्याग गरिसकेपछि त्यो वैश्य शिवजीको अनुचर भएर सुखपूर्वक बस्न थाल्यो। प्रमथगण बनेर शिवजीको नजिकै बस्यो। जसले सभक्ति विधिपूर्वक धनेश्वरको पूजा गर्छन्, ती व्यक्तिहरू धनी हुन्छन्, यसमा शङ्का छैन। यस लोकमा सुखभोग गरेर ती व्यक्ति मरेपछि शिवलोक पुग्छन्। जन्मभर गरेका आफ्ना पापबाट ती तुरुन्तै मुक्त हुन्छन् ॥२५-२९॥

हे विरूपाक्ष ! अब तिमी यहाँबाट पश्चिमतिर छ हजार धनु अर्थात् चौबीस हजार हात पर विकटेश्वर महादेव हुनुहुन्छ, त्यहाँ जाऊ। परमेश्वर द्रोणाचलको फेदीमा सधैँ पुष्पतीर्थमा रुद्रावतीको पश्चिमपट्टि विराजमान हुनुभएको छ। हे विरूपाक्ष ! मेरो निर्देशन अनुसार त्यस तीर्थको जलमा स्नान गरेर भक्तिपूर्वक विधिअनुसार विकटेश्वर महालिङ्गको पूजा गर। हे सज्जन ! तिमीले अहिले मानिसहरूलाई ऐश्वर्य प्रदान गर्ने लिङ्गको बारेमा सोध्यौ। सबैको कल्याण गर्ने धनेश्वरको माहात्म्य मैले तिमीलाइ बताएँ ॥३०-३३॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा धनेश्वरको माहात्म्यनामक छयान्नब्बेऔँ अध्याय पूरा भयो।

---

१०. प्रजा वावन्तिकापुरे इति न.सं.पु.पाठः।
११. स शिवं लभेत् इति न.सं.पु.पाठः।
१२. पृष्टं यतो मामधुना इति न.सं.पु.पाठः।

# सप्तनवतितमोऽध्यायः

## पुष्पतीर्थयात्रामहिमा

### स्कन्द उवाच

ततोऽगमद्विरूपाक्षो मुनिना सह वै मुने। विकटेशो हि यत्राऽऽस्ते भक्त्या तमर्चितुं मुदा ॥१॥
स्नात्वा च रुद्रतीर्थं स विकटेशमपूपुजत्। भक्त्या पञ्चोपचारैश्च जितेन्द्रियो मुदाऽन्वितः ॥२॥
माघकृष्णस्य सप्तम्यां तमभ्यर्च्य महानिशि। विनिद्रोऽसौ ततो भूत्वा तन्नाम प्रजपन्मुहुः ॥३॥
ततो भूयो विरूपाक्षश्चाऽपृच्छन्नेमुनिं मुने। विकटेशसमुद्भूतिं माहात्म्यञ्च हृदा मुदा[1] ॥४॥

### विरूपाक्ष उवाच

नेमुने मुनिशार्दूल सर्ववार्ताविशारद। एतल्लिङ्गस्य माहात्म्यं श्रोतुमिच्छाम्यहं ध्रुवम् ॥५॥
कथं समुद्भवश्चास्य लिङ्गं केन प्रसेवितम्। को मुक्तोऽभूत्पुरा चाऽत्र विकटेशं हृदा भजन्[2] ॥६॥

### नेमुनिरुवाच

आसीन्म्लेच्छः पुरा कश्चित् विकटो नाम विश्रुतः। स कदाचिद्दिने विप्र मृगयायै गतो वनम्[3] ॥७॥
विलङ्घ्य कन्दरान् शैलान् मृगयाश्रमपीडितः। तृषार्त्तः पुष्पतीर्थे स पानीयञ्च पपौ सुखम् ॥८॥
अचिन्तयत्तदोदासो निःसारां[4] संसृतिं भवम्। धिङ् मम जीवितञ्चेह परहिंसासु लालसम् ॥९॥
परमांसाशने रक्ता हन्तुं समुद्यताः परान्। म्लेच्छाश्च बहवश्चेह निधनं तेऽपि सङ्गताः ॥१०॥
परमांसाशनैः पुष्टाश्चापि च धनिनः परे। तन्मांसैः पोषितो देहो विपदं चैष्यति ध्रुवम्[5] ॥११॥
तस्मान्न हन्मि जन्तून् हि चाऽद्यादि सत्यमेव च। चिन्तयामि शिवं साक्षाद्यावज्जीवमिहैव च ॥१२॥
ततश्च तारयिष्येऽहमिहाऽऽत्मानममूमघात्।

---

## अध्याय - ९७

### पुष्पतीर्थयात्राको महिमा

कार्तिक स्वामीले भन्नुभयो– त्यसपछि विरूपाक्ष नेमुनिलाई साथमा लिएर जहाँ विकटेश्वर महादेव हुनुहुन्थ्यो, त्यसै ठाउँमा भक्तिपूर्वक उहाँको पूजा गर्न गए। उनले रुद्रतीर्थमा स्नान गरेर जितेन्द्रिय भई प्रसन्न हुँदै सभक्ति पञ्चोपचार विधिले विकटेश्वरको पूजा गरे। माघ कृष्ण सप्तमीको राती विकटेश्वरको पूजा गरेर बारम्बार उहाँको नाम जप्दै जाग्राम बसे। हे अगस्त्य मुनि ! त्यसपछि विरूपाक्षले प्रसन्न भएर भक्तिपूर्वक विकटेश्वर उत्पन्न हुनुभएको माहात्म्य नेमुनिसँग सोधे ॥१-४॥

विरूपाक्षले भने – सम्पूर्ण विषयका ज्ञाता हे मुनिश्रेष्ठ नेमुनि ! यो लिङ्गको माहात्म्य म सुन्न चाहन्छु। यस लिङ्गको उत्पत्ति कसरी भयो ? कसले यस लिङ्गको आराधना गर्‍यो ? अघि को मुक्त भयो ? विकटेश नाम कसरी प्रसिद्ध भयो ? ॥५-६॥

नेमुनिले भन्नुभयो – अघि विकट नाम गरेको एउटा म्लेच्छ थियो। हे ब्राह्मण ! कुनै दिन त्यो वनमा शिकार खेल्न गयो। शिकार खेल्दा गरेको परिश्रमबाट थाकेको त्यो म्लेच्छ गुफा र पहाडहरू नाघ्दै तिर्खाले व्याकुल भएर पुष्पतीर्थमा पुग्यो र त्यहाँ उसले आनन्दसित पानी पियो। विरक्त त्यस म्लेच्छले असार संसारको बारेमा विचार गर्दै भन्यो – अर्काको हिंसामा लोभिएको मेरो जीवनलाई धिक्कार छ। अर्काको मासु खाने काममा तत्पर भएर अरूलाई मार्ने धेरै म्लेच्छहरू पनि मरेर गए। अर्काको मासु खाएर पुष्ट भएका धनीहरू पनि थिए, तिनीहरू पनि मरेर गए। शिकार गरिएका पशुका मासुले पोसिएको मेरो यो शरीर पनि आपत्तिमा पर्नेछ। त्यसैले आजदेखि म जनावरहरूलाई मार्दिनँ, यसै ठाउँमा बसेर बाँचुञ्जेल साक्षात् शिवजीको ध्यान गर्दछु, अनि म यस ठाउँमा बसेर यस शरीरलाई पापबाट उद्धार गर्नेछु ॥७-१२॥

---

१. विकटेशसमुद्भूतं माहात्म्यं भक्तितो मुदा इति न.सं.पु.पाठः।
२. विकटेश इति श्रुतः इति न.सं.पु.पाठः।
३. मृगायां गतवान्वने इति न.सं.पु.पाठः।
४. चासारम् इति न.सं.पु.पाठः।
५. विपदेष्यत्ययं मम इति न.सं.पु.पाठः।

नेमुनिरुवाच

एवं विमृश्य सः स्वान्ते विरक्तश्चेतसा बहु ॥१३॥

तज्जलपानसुज्ञातो निश्चितवान्तदा द्विज। सन्त्यज्य कार्मुकं बाणं सस्नौ पुष्पवतीजले ॥१४॥

ततो द्रोणाचले क्रोडे तस्थौ विरक्तनिर्जनः। दध्यौ च द्वादशाब्दं स श्रुत्वैव कस्यचिनमुनेः[६] ॥१५॥

त्रिविधज्ञानयुग्भक्त्या[७] मन्त्रैःस्तवैर्विवर्जितः। पीड्यमानो[८]ऽनिलैर्दावैवृष्टिभिश्च तथा भृशम् ॥१६॥

क्षुत्तृट्पीडासहस्तेपे[९] गण्डग्राव इवाचले। ततो द्वादशवर्षान्ते लिङ्गं शिलामयं तदा ॥१७॥

तपःकृष्णतृतीयायां समुद्भूतं तदग्रतः। आविर्भूतस्ततो लिङ्गाच्छङ्करो भक्तशङ्करः ॥१८॥

वरदानाय तस्मै च तद्भक्त्या तोषितो विभुः। व्याचष्ट विकटं म्लेच्छं निजभक्तं[१०] तपस्विनम् ॥१९॥

तं श्रावयन् हितं वाक्यं सस्मितः[११] शङ्करो विभुः।

शङ्कर उवाच

शृणु भक्त ! वरं दास्ये तपस्विने हि तेऽधुना ॥२०॥

तुष्टोऽहं तपसा ते च निर्विकारेण चेतसा। मत्पार्श्वगः सदा भूत्वा प्रमथनायको भव ॥२१॥

अतिप्रियः सखा मे[१२] त्वमनेन तनुना समम्। एतल्लिङ्गञ्च ते नाम्ना ख्यातिं यास्यति सन्ततम् ॥२२॥

विकटेश्वर इत्येवं लोकोऽद्यतो वदिष्यति।

---

नेमुनिले भन्नुभयो – हे ब्राह्मण विरूपाक्ष ! त्यस तीर्थमा जल पिउनाले असल बुद्धि पलाएको त्या वैश्यले हृदयमा यस्तो धेरै कुरा सोच्यो। त्यसपछि धनुष बाणलाई त्याग गरेर त्यसले पुष्पवती नदीको पानीमा स्नान गऱ्यो अनि द्रोणाचलको बीचमा विरक्त भएर एक्लै बस्यो। कुनै ऋषिबाट उपदेश लिएर बाह्र वर्षसम्म त्यसले ध्यान गऱ्यो। शरीर, वचन तथा मन लगाएर ज्ञानी हुँदै भक्तिसाथ स्तोत्र र मन्त्र केही नजपी त्यस म्लेच्छले हावा, डढेलो, भोक र वर्षाले सताए तापनि तिनीहरूलाई सहेर पहाडमा ठूलो ढुङ्गा बसेझैँ तपस्या गऱ्यो। बाह्र वर्ष बितेपछि माघ कृष्ण तृतीयाका दिन त्यसका अगाडि शिलामय एउटा लिङ्ग प्रादुर्भाव भयो। त्यसको भक्तिले सन्तुष्ट भएर त्यसलाई वर दिनका निमित्त भक्तवत्सल भगवान् शङ्कर त्यसै लिङ्गबाट पैदा हुनुभयो। आफ्नो भक्त तपस्वी विकट म्लेच्छलाई हित वचन सुनाउँदै मुसुक्क हाँसेर भगवान् शङ्करले भन्नुभयो ॥१३-१९॥

शङ्करले भन्नुभयो – हे भक्त ! सुन – तिमीले ठूलो तपस्या गऱ्यौ, तिमीलाई म वर दिन्छु। निर्विकार चित्तले गरेको तिम्रो तपस्याबाट म प्रसन्न भएँ। यो शशरीरजस्तै तिमी मेरा अत्यन्त प्यारा साथी छौ, प्रमथगणको नायक बनेर सधैँ तिमी मेरो छेउमा बस। यो लिङ्ग तिम्रो नाउँबाट निरन्तर प्रसिद्ध हुनेछ। आजदेखि मानिसहरूले यस लिङ्गलाई विकटेश्वर भन्नेछन् ॥२०-२२॥

---

६. श्रुत्वा कश्चिन्मुनेर्मुखात्, इति न.सं.पु.पाठः।
७. त्रिविधैर्ज्ञानयुग्भक्त्या इति न.सं.पु.पाठः।
८. सह्यमानः इति न.सं.पु.पाठः
९. क्षुत्पिपासैः स तेपे वै इति न.सं.पु.पाठः।
१०. स्वभक्तिने इति न.सं.पु.पाठः।
११. स्मितेन इति न.सं.पु.पाठः।
१२. अतिप्रियसखो मे इति न.सं.पु.पाठः।

नेमुनिरुवाच

इत्येवं शङ्करस्तस्मै वरं दत्त्वा विरूपदृक् ॥२३॥
तं दर्शयन् स्वमात्मानमेतल्लिङ्गे तिरोदधे। तत्क्षणादाययुश्चाऽत्र प्रमथा हिमवद्गिरेः ॥२४॥
अभिषेकं ददुस्तस्मै मुहुर्वाद्यान्यवादयन्[१३]। हिमवन्तं ययुस्ते वै यत्र सिद्धेश्वरः स्थितः ॥२५॥
तं सहर्षं पुरोधाय देवं[१४] विमानगा द्विज। ततः प्रभृतिरेतद्वै विकटेश इति श्रुतः ॥२६॥
अत्राऽऽगत्य तदा स्वर्गाद्देवर्षिभिः प्रसेवितम्। योऽर्चति भक्तितो मर्त्यश्चैतल्लिङ्गं मुदान्वितः ॥२७॥
सर्वैनोभिर्विनिर्मुक्तः स भवेन्मृगयाजयी। अत आग्नेयकाष्ठायां[१५] गच्छ विरूपदृक् पुनः ॥२८॥
यत्रेन्द्रेश्वर आस्ते स शचीतीर्थेन वै समम्।

स्नात्वा सुतीर्थप्रवरे पवित्रे तत्[१६] किल्विषं नश्यति कृच्छ्रसाध्यम्।
इन्द्रेश्वरं पूजय भक्तिभिस्तं निष्पापदेहो भव हे विरूपदृक्[१७] ॥२९॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां पुष्पतीर्थविकटेश्वरयोर्माहात्म्यं नाम सप्तनवतितमोऽध्यायः ॥९७॥

---

नेमुनिले भन्नुभयो – हे विरूपाक्ष ! इति भनेर भगवान् शङ्करले त्यसलाई वर दिनुभयो र आफ्नो स्वरूप त्यसलाई देखाएर त्यसै लिङ्गमा अन्तर्धान हुनुभयो। तुरुन्त हिमालय पहाडबाट प्रमथगणहरू यहाँ आएर बारम्बार आ–आफ्नो बाजा बजाउँदै त्यसलाई अभिषेक दिए। हे विरूपाक्ष ! त्यसपछि उनीहरू विकटलाई अगाडि लगाई सिद्धेश्वर भगवान् बस्नुभएको हिमालय पर्वतमा विमानमा चढेर गए। त्यसै समयदेखि यस तीर्थलाई विकटेश्वर भनियो ॥२३–२५।½।

यहाँ आएर स्वर्गबाट देवता र ऋषिहरूले विकटेश्वरको आराधना गरे। जसले भक्तिपूर्वक प्रसन्न भएर यो विकटेश्वर लिङ्गको पूजा गर्छ, त्यो मानिस शिकार खेल्दा लागेका सम्पूर्ण पापबाट मुक्त हुन्छ। हे विरूपाक्ष ! अब तिमी जहाँ शचीतीर्थको साथमा इन्द्रेश्वर रहनुभएको छ, त्यस आग्नेय दिशामा जाऊ। जुन असल तीर्थमा स्नान गर्नाले कष्टले मात्र हटाउन सकिने तिम्रा पापहरू सजिलै नाश हुनेछन्, त्यहाँ स्नान गरेर भक्तिपूर्वक इन्द्रेश्वरको पनि पूजा गर । त्यसो भएपछि तिम्रो शरीर पापबाट मुक्त हुनेछ ॥२६–२९॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा पुष्पतीर्थ र विकटेश्वरको माहात्म्यनामक सन्तान्नब्बेऔँ अध्याय पूरा भयो।

---

१३. स्ववाद्यं वादयन्मुहुः इति न.सं.पु.पाठः।
१४. विकटं तं पुरोधाय हर्षम् इति न.सं.पु.पाठः।
१५. आग्नेयदिशि च इति न.सं.पु.पाठः।
१६. हि यत्र ते, इति न.सं.पु.पाठः।
१७. भविता ततस्त्वम् इति न.सं.पु.पाठः।

# अष्टनवतितमोऽध्यायः

## प्राचीतीर्थेन्द्रेश्वरशिवलिङ्गमहिमा

### स्कन्द उवाच

ततोऽगमद्विरूपाक्षः शचीतीर्थं समं तदा। मुदा नेमुनिना भक्त्या तत्र स्नातुं घटोद्भव ॥१॥
कृष्णाष्टम्याञ्च माघस्य शचीतीर्थं विरूपदृक्। सस्नौ भक्त्या महारात्रौ लिङ्गं पूजितवान् पुनः ॥२॥
निशि जागृतिमान् भूत्वा ज्ञानधर्मसमन्वितः। अपृच्छत्तीर्थमाहात्म्यं लिङ्गस्य तद्विशेषतः ॥३॥

### विरूपाक्ष उवाच

भो सर्वविन्मुनिश्रेष्ठ ! श्रोतुमिच्छाम्यहं तव। एतत्तीर्थस्य माहात्म्यञ्चैतल्लिङ्गस्य वै पुनः ॥४॥
कथं तीर्थसमुद्भूतिः[1] केन प्रकाशितं पुरा। समुद्भूतमिदं लिङ्गं कथं[2] मुक्तश्च को वद ॥५॥

### नेमुनिरुवाच

अहो धन्योऽसि वत्स ! त्वमीदृशं ते मनो यतः। पुराभूताञ्च तद्वार्तां शृणु वक्ष्यामि सादरम् ॥६॥
आसीद् ब्रह्मपुरी नाम्नी मिथिलायां विराजिता। तस्यां विराजते नित्यं गौतमो नाम तापसः ॥७॥
अहल्या नाम तत्पत्नी पतिव्रता प्रियंवदा। सर्वलक्षणसम्पूर्णा चाऽऽसीत्सर्वाङ्गसुन्दरी ॥८॥
सा कदाचिद्दिने साध्वी वाटिकायाञ्चचार वै[3]। एकाकिनी ऋतुस्नाता चिन्वन्ती कुसुमानि सा[4] ॥९॥
शक्रः समाययौ तत्र तां लोकितुं महामनाः। आकर्ण्य तद्गुणं सर्वं नारदात् त्रिदिवे ततः ॥१०॥
इन्द्रो ददर्श तां तत्र क्रीडन्तीं कुसुमैर्मुदा। चन्द्रवक्त्रां मृगाक्षीञ्च पीनपयोधरां[5] स्मिताम् ॥११॥

---

## अध्याय - ९८

### प्राचीतीर्थ र इन्द्रेश्वर शिवलिङ्गको महिमा

कार्तिकस्वामीले भन्नुभयो – त्यसपछि विरूपाक्ष नेमुनिलाई साथमा लिएर प्रसन्न हुँदै भक्तिपूर्वक स्नान गर्नका लागि शचीतीर्थमा गए। माघकृष्ण अष्टमीका दिन विरूपाक्षले शचीतीर्थमा स्नान गरे अनि त्यसै दिनको महारात्रिमा उनले भक्तिपूर्वक लिङ्गको पूजा गरे। ज्ञान र धर्मले युक्त भएका ती मुनिले राति जागा बसेर तीर्थ र विशेष गरी लिङ्गको महात्म्य मुनिसित सोधे ॥१–३॥

विरूपाक्षले भने – हे सर्वज्ञ मुनि ! यो तीर्थ र यो लिङ्गको महात्म्य हजुरबाट सुन्न चाहन्छु, यो तीर्थको उत्पत्ति कसरी भयो ? कसले यसलाई प्रकाशित गऱ्यो ? यो लिङ्ग कसरी पैदा भयो ? त्यसको आराधनाबाट को मुक्त भयो ? बताउनुहोस् ॥४–५॥

नेमुनिले भन्नुभयो – हे बाबु ! तिमी धन्य छौ, किनभने तिम्रो मनमा यस्तो कुरा पैदा भयो। यस विषयमा पुरानो एउटा कथा छ, बताउँछु, ध्यान दिएर सुन। मिथिलामा सुशोभित भएर रहेको ब्रह्मपुरी नाम गरेको शहर थियो। त्यहाँ गौतम नाम गरेका तपस्वी सधैं बस्नुहुन्थ्यो। मिठो बोल्ने, प्रतिव्रता, अहल्या नाम गरेकी उनकी पत्नी थिइन्। उनी सम्पूर्ण लक्षणले युक्त भएकी र सर्वाङ्ग सुन्दरी थिइन्। पतिव्रता ती अहल्या ऋतुस्नान गरेर फूल टिप्नका निमित्त एक्लै आनन्दसित बगैंचामा हिँडिरहेकी थिइन्। तिनताका स्वर्गमा उनको गुणको बखान नारदको मुखबाट सुनेर इन्द्र अहल्यालाई हेर्न त्यस बगैंचामा आए। फूलसित प्रसन्न हुँदै खेलिरहेकी, चन्द्रमाको जस्तो मुख र मृगका आँखाजस्ता आँखा भएकी, साह्रा स्तनहरू भएकी र मुसुक्क हाँस्ने अहल्यालाई इन्द्रले देखे ॥६–११॥

---

१. समुद्भवं तीर्थम् इति न.सं.पु.पाठः।
२. तस्मान् इति न.सं.पु.पाठः।
३. उपवने चचार वै इति न.सं.पु.पाठः।
४. पुष्पाण्यवचयन् मुदा इति न.सं.पु.पाठः।
५. गाढपयोधराम् इति न.सं.पु.पाठः।

शक्रो मुमोह तां प्रेक्ष्य चाऽचिन्तयत्ततः पुनः । एतया सह मे कामं भविष्यति कदा रतिः ॥१२॥
इति चिन्ताकुलः शक्रस्तस्थौ तत् कुटिरान्तिके[६] । तदा संवृत्य चाऽऽत्मानं रहो गवेषणातुरः[७] ॥१३॥
यदा निशात्रिभागेऽसौ ययौ स्नातुं हि गौतमः । उपकरणमादाय गङ्गायां निर्जनो द्विजः ॥१४॥
तदा शक्रः स्वमात्मानं मुनिरूपञ्च तद्दधौ । तस्याऽऽकृतितनुर्भूत्वा तत्कुटीरे[८] विवेश वै ॥१५॥
ततो व्याचष्ट शक्रस्तां प्रिये ! देहि रतिञ्च मे । कामदग्धोऽधुना चाऽहं ततः स्नात्वा[९] त्विहागतः ॥१६॥

अहल्योवाच

भगवन् ! प्रिय चाऽद्य त्वं कथं प्राकृततां गतः । एषा चेष्टा कदाऽप्यार्य न ते दृष्टा मया प्रभो ॥१७॥
भूत्वा मुनिवरो ब्राह्मे तीर्थप्रवञ्चकोऽधुना । स्नानं जपार्चनं त्यक्त्वा[१०] कामलुब्धोऽभवद् भवान् ॥१८॥

इन्द्र उवाच

मा मा त्वयाऽद्य वक्तव्यं वचनं कटुकञ्च मे । दातव्यः कामिने कामः कामिन्योक्तमिति श्रुतौ ॥१९॥
दत्त्वा क्षेमं प्राप्नुवन्ति नो हि चेदन्धलोचनाः । यदि ददासि मे कामं त्वां भस्मसात्करोमि न ॥२०॥

नेमुनिरुवाच

अहल्याऽऽशु ततस्तस्मै सुरतं प्रददौ पुरा । तच्छापभीषणत्रस्ता प्रकृतिं कलयन्त्यथ ॥२१॥
प्रत्यागतः पुनर्गेहं तिलं विस्मृतवान् मुनिः । गङ्गातीरादसौ विप्र ! तिलार्थञ्चैव गौतमः ॥२२॥
ततो ददर्श शक्रं स रतिनिर्वृत्तसंस्थितम् । भार्यामुत्तानपादां वै प्रेक्ष्य रुषा प्रमूर्च्छितः ॥२३॥
कृत्वेति किमिति प्रेक्ष्य चाऽहल्या च प्रधर्षिता । गवाक्षान्निर्ययौ शक्रस्तं प्रेक्ष्य धर्षितो द्रुतम् ॥२४॥
शापं ददौ मुनिस्ताभ्यां छन्दितोऽहं यतस्त्वया । अवज्ञा मे कृता यस्मात्तस्मात्त्वं प्रस्तरा भव ॥२५॥
मे पत्नी लुण्ठिता यस्माद् भगहेतोस्त्वया वृषन्[११] । त्वं सहस्रभगाङ्काङ्गी तस्माद् भवाद्यतः शठ ॥२६॥

---

इन्द्र ती अहल्यालाई देखेर मोहित भए र यस स्त्रीसित आनन्दसँग मेरो रतिक्रीडा कहिले होला भन्ने सोचे । त्यसपछि चिन्तित हुँदै इन्द्र त्यसै कुटीको नजिकै एकान्त स्थलको खोजीको क्रममा लुकेर बसे । जब रातको एक भाग बाँकी थियो, त्यसबखत गौतम ऋषि स्नानका सबै सामग्री लिएर एक्लै गङ्गामा स्नान गर्न गए । त्यसपछि इन्द्र ऋषिको रूप धारण गरेर गौतमको जस्तो अनुहार र शरीर लिई तिनको कुटीमा पसे । त्यसपछि अहल्यामा आसक्त भएका गौतम रूपधारी इन्द्रले भने – हे प्रिये ! म अहिले कामवासनाबाट दग्ध छु । त्यसैले ननुहाइकन यहाँ आएँ । मलाई रति देऊ ॥१२–१६॥

अहल्याले भनिन् – हे प्रभु ! हे भगवन् ! तपाईं आज कसरी यस्तो प्राकृत अर्थात् अज्ञानी पशुजस्तो बन्नुभयो ? हे आर्य ! तपाईंको यस्तो क्रियाकलाप यसअघि त देखेकी थिइनँ । आज तीर्थ ठगिया, मुनि भएर पनि ब्रह्ममुहूर्तमा गर्नुपर्ने काम तपाईंले छोड्नुभयो । स्नान, जप र पूजालाई छोडेर तपाईं कसरी कामुक बन्नुभयो ॥१७–१८॥

गौतमरूपधारी इन्द्रले भने – तिमीले मलाई यस्तो कटु बोली नबोल किनभने कामुक व्यक्तिलाई कामिनीले कामभोग दिनैपर्छ भनेर शास्त्रमा भनेको छ । हे अहल्या ! मलाई कामभोग दियौ भने तिम्रो कल्याण हुन्छ, यदि मलाई कामभोग दिदैनौ भने म तिमीलाई भस्म गर्छु ॥१९–२०॥

नेमुनिले भन्नुभयो– त्यसपछि तिनका सरापबाट डराएर अहल्याले नारीप्रकृति अंगालेर तुरुन्त रतिसुख दिइन् । हे ब्राह्मण ! विरूपाक्ष ! तिल बिर्सिएर गौतममुनि तिल लिनका लागि गङ्गाको तीरबाट कुटीमा फर्किए । त्यसपछि रतिक्रीडा सिध्याएर उभिइराखेका इन्द्र र खुट्टा उत्तानो पारेर सुतिरहेकी आफ्नी पत्नीलाई देखेर गौतममुनि रीसले मूर्च्छा परे । के गरेर बसेकी भनेर अहल्यालाई गौतमले झपारे । त्यो देखेर इन्द्र झ्यालको प्वालबाट निस्किएर तुरुन्त भागे । ऋषिले दुवैलाई सराप दिए – तैंले मलाई छलिस् र मेरो हेला गरिस्, त्यसकारण तैंले पत्थर हुनुपरोस् । हे इन्द्र ! कामुक भएर तैंले मेरी पत्नीलाई ठगिस्, त्यसैले तेरा शरीरभरि आजदेखि हजार योनीहरू बनून् ॥२१–२६॥

---

६. कुट्टिमान्तिके इति न.सं.पु.पाठः ।
७. रहान्वेषणतत्परः इति न.सं.पु.पाठः ।
८. तत्कुट्टिने इति न.सं.पु.पाठः ।
९. ततोऽस्नात्वा इति न.सं.पु.पाठः ।
१०. त्यज्य इति न.सं.पु.पाठः ।

नेमुनिरुवाच

ततः शक्रः सहस्रैश्च भगैः समन्वितस्तदा। स्वात्मानं प्रेक्ष्य निन्दाढ्यं व्यथितो ह्यगमद् गृहम् ॥२७॥
अवलोक्य शची शक्रं तद्विग्रहं भगाङ्कितम्। अपृच्छत्तस्य हेतुं तमाश्चर्येणैव दुःखिता ॥२८॥
अवोचदाशु तद्धेतुं तस्यै सर्वं पुरन्दरः। व्रीडया व्यथितः शश्वदभूनम्रमुखः श्वसन् ॥२९॥
हसन्ती तमुपश्रुत्य चाऽप्सरोभिः शची सह। करतालं मुदा चक्रुरन्या देव्यः स्मिताननाः ॥३०॥
व्याजहार वचः क्रुद्धा शची स्वान्तःसुदुःखिता। धिग्धिग्विभो ! यतः कार्यमीदृशं चेष्टितं तव ॥३१॥
त्यक्त्वा चाऽप्सरसः पत्नी ऋषेः सती प्रलुण्ठिता। मायया छन्दिता तस्माच्चेष्टां धिगस्तु ते शठ ॥३२॥

नेमुनिरुवाच

ततो बृहस्पतिं विप्र समाहूय शची तदा। पृच्छति स्म तदामन्त्र्य तस्य शापविमोचनम् ॥३३॥
गुरुश्चाऽपि तदाकर्ण्य व्याजहार शुभं वचः। तच्छापमोचनार्थाय शच्यै शक्राय साम्प्रतम् ॥३४॥

बृहस्पतिरुवाच।

विधेराज्ञां समादाय शक्रैतया समं मुने कुञ्जभूभृदधोभागे तत्र पुण्या क्षितिर्भवेत् ॥३५॥
लीलावती नदी श्रेष्ठा रुद्रावती तथापरा। तयोश्च सङ्गमे स्नात्वा चाऽऽराधय त्वमीश्वरम् ॥३६॥
तत्रैव स्नानमात्रेण निष्पापाङ्गो भविष्यसि। आराधनेन श्रीशम्भोरेष शापो[१२] विनश्यति ॥३७॥

नेमुनिरुवाच

ततः प्रणम्य धातारं तदाज्ञामाप्तवान् ध्रुवम्। अत्रागमत्तदा शक्रः शच्या सह च साम्प्रतम् ॥३८॥
सुस्नातौ हि शचीशक्रौ तीर्थेऽस्मिंस्तौ मुदान्वितौ[१३]। ततः शक्रः शिवं दध्यौ सा च तीर्थे शिवां पुनः ॥३९॥

---

नेमुनिले भन्नुभयो – त्यसपछि हजारौँ योनिले युक्त भएको आफ्नो शरीरलाई देखेर इन्द्र आफैलाई निन्दा गर्दै दुःखित भएर घर गए। योनि नै योनिले भरिएको शरीर भएका इन्द्रलाई देखेर आश्चर्य तथा दुःखित हुँदै इन्द्राणीले त्यसको कारण इन्द्रलाई सोधिन्। त्यसपछि लाजले खिन्न हुँदै बारम्बार निहुरोमुन्टो लगाएर श्वास फेर्दै अहल्यासित भएका सबै कुराको वृत्तान्त इन्द्रले इन्द्राणीलाई तुरुन्तै भने। इन्द्रका कुरा सुनेर अप्सराहरूका साथ इन्द्रको उपहास गरिरहेकी इन्द्राणीका कुरा सुनेर स्वर्गका अरू देवीहरूले सानन्द मुसुमुसु हाँस्दै ताली बजाए ॥२७–३०॥

अप्सराहरूका साथमा बसेकी इन्द्राणीले क्रुद्ध हुँदै इन्द्रलाई भनिन् – हे प्रभो ! हजुरलाई धिक्कार छ, किनभने हजुरले यस्तो नराम्रो काम गर्नुभयो। हे मूर्ख इन्द्र ! अप्सरा र आफ्नी पत्नी छँदाछँदै तिनलाई छोडेर मायाले छलेर पतिव्रता ऋषिपत्नीलाई उपभोग गर्न जानुभयो, तपाईंको क्रियाकलापलाई धिक्कार छ ॥३१–३२॥

नेमुनिले भन्नुभयो – हे विरूपाक्ष ! त्यसपछि इन्द्राणीले बृहस्पतिलाई बोलाएर इन्द्रमाथि लागेको ऋषिको सराप छुट्याउने उपायको बारेमा सोधनी गरिन् ॥३३॥ त्यसपछि बृहस्पतिले पनि इन्द्रलाई त्यो सरापबाट मुक्त गराउनका लागि इन्द्राणीलाई भने ॥३३–३४॥

बृहस्पतिले भन्नुभयो – हे इन्द्र ! विधिको निर्देश अनुसार इन्द्राणीलाई साथैमा लिएर त्यो झाडीको तल्लो भागमा रहेको पवित्र स्थलमा गएर बस। त्यहाँ लीलावती र अर्को रुद्रावती नाम गरेको नदी छन्। ती दुईको नदीको सङ्गममा स्नान गरेर तिमी भगवान् शङ्करको आराधना गर त्यहाँ स्नान गर्ने वित्तिकै तिम्रा शरीरका अङ्गहरू पापबाट मुक्त हुनेछन्। शिवजीको आराधना गर्‍यौ भने तिम्रो सराप नाश हुनेछ ॥३५–३७॥

नेमुनिले भन्नुभयो – त्यसपछि इन्द्रले ब्रह्मालाई नमस्कार गरे। ब्रह्माको आज्ञा लिएर इन्द्र आफ्नी पत्नी इन्द्राणीका साथ यस ठाउँमा आए ॥३८॥ ती दुवे इन्द्र र इन्द्राणीले यस तीर्थमा बडो आदरका साथ प्रसन्न भएर स्नान गरे। त्यसपछि त्यस तीर्थमा बसेर इन्द्रले शिवजीको र इन्द्राणीले पार्वतीको ध्यान गरेका थिए ॥३८–३९॥

---

११. भवाद्यतस्त्वया इति न.सं.पु.पाठः।
१२. शम्भु च एतच्छापम् इति न.सं.पु.पाठः।
१३. मुदाद्रितौ इति न.सं.पु.पाठः।

आराधिता तया देवी भक्त्या तयोश्च सङ्गमे । आविर्भूता नदीरूपोवा पद्मावती सती[१४] ॥४०॥
अन्तरेण तयोस्तां वै सुप्रवाहां ददर्श सा । मेने कृतार्थमात्मानं दृष्ट्वा तां दिव्यचक्षुषा ॥४१॥
दिव्यैकाब्दान्तरे लिङ्गं समुद्भूतं तदग्रतः । आषाढीपूर्णिमायां वै चाऽऽर्द्रार्क्षसंयुजि द्विज ॥४२॥
वरदानाय भक्ताय चाञ्जसा सगुणो विभुः । तस्मादाविर्बभौ रुद्रः प्रोवाचाऽरं शचीपतिम्[१५] ॥४३॥

इन्द्रेश्वर उवाच

शच्या कृतं तपश्चात्र पद्मावतीसमुद्भवः । तयोश्च सङ्गमे शक्र ! शचीतीर्थन्ततोऽभवत् ॥४४॥
तत्र स्नाहि मुदा शक्र ! शचीतीर्थे च भक्तितः । ततो नश्यन्ति ते शापा एकं विना च सर्वशः ॥४५॥
गौरवान्मुनिशापस्य योनिश्चैका प्रतिष्ठति । ते ललाटे सदा शक्र ! देवराजस्ततः पुनः ॥४६॥
एतल्लिङ्गञ्च ते नाम्ना भविष्यति क्षितौ सदा । इन्द्रेश्वर इति ख्यातं लोकवाञ्छाफलप्रदम् ॥४७॥

नेमुनिरुवाच

ततः शक्रो वचः श्रुत्वा रुद्रोदितञ्च भक्तितः । परिक्रमन् स्तवै रुद्रं प्रणम्य च पुनः पुनः ॥४८॥
सस्नौ तत्र मुदा शक्रो निमज्योन्मज्ज्य भक्तितः । ज्येष्ठस्य पूर्णिमायाञ्च ब्राह्मे यथाविधि द्विज ॥४९॥
समुत्तीर्णो जलाच्छक्रश्चापश्यत्स्वतनुं पुनः । शापोद्भूतैर्भगैर्मुक्तो मुमुदे[१६] च भृशं मुहुः ॥५०॥
ततो ब्रह्मादयो देवाश्चात्रागत्य च सर्वशः । अभिषेकं ददुस्तस्मै नानावाद्यान्यवादयन्[१७] ॥५१॥
यानेन च समानिन्युः स्वर्गं शक्रञ्च देवताः । शच्या समं पुरोधाय हर्षविस्फुल्लमानसाः ॥५२॥
देवाश्च मुनयः सिद्धाश्चात्रागत्येन्द्रेश्वरं प्रति[१८] । एतस्मिन्भक्तितः स्नात्वा चार्चन्त्यद्यादिमीश्वरम् ॥५३॥

---

इन्द्राणीले भक्तिपूर्वक आराधना गरेपछि ती दुई नदीको सङ्गममा नदीरूप लिएर भगवती पद्मावती प्रकट हुनुभयो र बग्नुभयो । इन्द्र र इन्द्राणीको बीचबाट अत्यन्त सुन्दर प्रवाहले युक्त भएको नदीलाई इन्द्राणीले देखिन् । दिव्य दृष्टिबाट तिनलाई देखेर इन्द्राणीले आफूलाई कृतार्थ भएको ठानिन् । हे विरूपाक्ष ! दिव्य एक वर्ष पुगेपछि आर्द्रा नक्षत्रले युक्त भएको आषाढशुक्ल पूर्णिमाका दिन इन्द्रकै समुन्नेमा लिङ्ग प्रकट भयो । भक्तलाई वरदान दिनका निमित्त भगवान् शङ्कर सगुणस्वरूप लिएर त्यसै लिङ्गबाट पैदा हुनुभयो र इन्द्रलाई भन्नुभयो ॥४०-४३॥

इन्द्रेश्वर अर्थात् भगवान् शङ्करले भन्नुभयो - इन्द्राणीले यस ठाउँमा तपस्या गरिन् । त्यसेले पद्मावतीको प्रादुर्भाव भयो । हे इन्द्र ! यी दुई नदीको सङ्गममा शचीतीर्थ बन्यो । हे इन्द्र ! यस शचीतीर्थमा भक्तिपूर्वक स्नान गर । त्यसपछि एउटयलाई छोडेर अरू सम्पूर्ण सरापहरू नाश हुनेछन् । ऋषिको सराप ज्यादै महत्त्वपूर्ण भएको हुनाले हे देवराज इन्द्र ! तिम्रो निधारमा एउटा योनि सधैं रहन्छ । पृथिवीमा उत्पन्न भएको यो लिङ्ग तिम्रो नाउँले इन्द्रेश्वर भएर प्रसिद्ध हुनेछ, यसले प्राणीहरूले चाहेको फल उपलब्ध गराउनेछ ॥४४-४७॥

नेमुनिले भन्नुभयो - त्यसपटि इन्द्रले रुद्रको वचन सुनेर भक्तिपूर्वक रुद्रको परिक्रमा गरे, स्तुति गरे र बारम्बार प्रणाम गरे । हे विरूपाक्ष ! त्यस तीर्थमा इन्द्रले डुब्दै, उत्रँदै गरेर ज्येष्ठ पूर्णिमाको दिन ब्राह्ममुहूर्तमा विधिपूर्वक सभक्ति स्नान ग रे ॥४८-४९॥

जलबाट निस्किएका इन्द्रले आफ्नो शरीरलाई फेरि हेरे । सरापबाट पैदा भएका योनिबाट मुक्त भएको शरीरलाई देखेर उनी अत्यन्त प्रसन्न भए । त्यसपछि ब्रह्मा आदि गरिएका देवताहरूले सबैतिरबाट आएर विभिन्न किसिमका बाजाहरू बजाउँदै तिनलाई अभिषेक दिए ॥५१॥ हर्षले प्रसन्न चित्त भएका देवताहरूले इन्द्राणीका साथै इन्द्रलाई यानमा राखेर स्वर्गमा लगे । आज पनि देवता, मुनि र सिद्धहरूले यहाँ आएर स्नान गरी भक्तिपूर्वक इन्द्रेश्वरको सधैं आराधना गर्दछन् ॥५०-५३॥

---

१४. पद्मावती सती नदीरूपा चाऽऽविर्भूता उवाह सा, इति न.सं.पु.पाठः ।
१५. रुद्रस्तस्मादुवाच सत्वरम् इति न.सं.पु.पाठः ।
१६. मुमोद इति न.सं.पु.पाठः
१७. नानावाद्यं प्रवादयन् इति न.सं.पु.पाठः ।
१८. सिद्धाश्चात्रागत्य स मां प्रति इति न.सं.पु.पाठः ॥

कश्चिन्मुक्तो द्विजः पूर्वमत्रैव शृणु तत्कथाम्। श्रुतश्रवेति विख्यातो विरक्तो ह्यगमद् द्विज ॥५४॥
शचीतीर्थे मुदा स्नात्वा चेन्द्रेश्वरमपूपुजत्। भाद्रे च पूर्णिमायां स नक्तं जागृतवान् तदा ॥५५॥
तन्निशि शिवदूताश्च तमास्थायाशु पुष्पके। निन्युः शिवपुरं दिव्यं सेवमाना महोत्सवैः[१९] ॥५६॥
अद्यापि स भवेद् विप्रो रुद्रस्यानुचरोऽनिशम्। महापराक्रमैर्युक्तः प्रमथानां महत्तमः[२०] ॥५७॥
स्नात्वा योऽत्र नरो धीमन् शचीतीर्थे विरूपदृक्। पूजतीन्द्रेश्वरं भक्त्या तस्य पुण्यफलं शृणु ॥५८॥
सर्वपापैर्विनिर्मुक्तो द्विजन्मनि समर्जितैः। गत्वा शक्रपुरं रम्यमिन्द्रेण सह मोदते ॥५९॥
या काचिदबला भक्त्या स्नात्वा चात्र प्रपूजति। इन्द्राणीञ्च महादेवीं शच्या सह प्रमोदते ॥६०॥
पञ्चोपचारकैर्मर्त्यश्चैतल्लिङ्गं प्रपूजति। बहुपापानि सन्त्यज्य शिवलोकं स गच्छति ॥६१॥
अतो वारुणदेशे त्वं भूयो गच्छ विरूपदृक्। निकुञ्जाचलकूटेऽधो यत्र भालेश्वरो विभुः ॥६२॥
लीलावत्यां मुदा स्नात्वा तल्लिङ्गं पूजयानिशम्। ततोऽर्चनाद् विरूपाक्ष ! सुसिद्धिं प्राप्नुयाद् ध्रुवम् ॥६३॥
माहात्म्यमेतत्कथितं पवित्रं लिङ्गस्य चैतस्य मयाऽधुना ते।
शृण्वन्ति मर्त्याः प्रसभञ्च भक्त्या ते प्राप्नुवन्तीन्द्रपुरीं सुखाढ्याम् ॥६४॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां शचीतीर्थेन्द्रेश्वरयोर्माहात्म्यं नाम अष्टनवतितमोऽध्यायः ॥९८॥

---

श्रुतश्रवा नाम गरेका कुनै ब्राह्मण अघि विरक्त भएर यहाँ आई तपस्या गरेर मुक्त भएका थिए। हे विरूपाक्ष ! त्यो वृत्तान्त सुन। उनले शचीतीर्थमा प्रसन्न भएर भाद्रशुल्क पूर्णिमाको दिन स्नान गरी इन्द्रेश्वरको पूजा गरे र रात्रीमा जाग्राम बसे। त्यसै रातमा शिवजीका दूतहरूले उनलाई तुरुन्त पुष्पक विमानमा राखेर विभिन्न उत्सव गर्दै शिवपुरमा लगे। आज पनि ती ब्राह्मण प्रथमगणहरूमा मुख्य तथा महापराक्रमी भएर सधैं शिवसेवकका रूपमा रहेका छन् ॥५४–५७॥

हे विरूपाक्ष ! बुद्धि भएको जुन मानिसले यस शचीतीर्थमा स्नान गरेर भक्तिपूर्वक इन्द्रश्वरको पूजा गर्छ, त्यसको पुण्यफल सुन। दुई जन्मसम्म लागेको सम्पूर्ण पापबाट मुक्त भएर त्यो व्यक्ति सुन्दर इन्द्र नगरीमा गएर इन्द्रका साथ आनन्दसित बस्न पाउँछ। जुन नारीले भक्तिपूर्वक यहाँ स्तुति गरेर इन्द्राणीको पूजा गर्छे त्यो इन्द्राणीका साथ आनन्दसित बस्न पाउँछे। जुन मानिसले पञ्चोपचार विधिबाट यो लिङ्गको पूजा गर्छ त्यो व्यक्ति सम्पूर्ण पापबाट मुक्तभएर शिवलोक जान्छ। हे विरूपाक्ष ! अब तिमी पश्चिमतिर जाऊ। त्यहाँ निकुञ्जाचलको शिखरमुनि भालेश्वर भगवान् बस्नुभएको छ। हे विरूपाक्ष ! लीलावतीमा स्नान गरेर त्यस लिङ्गको पूजा गर। त्यसो गर्नाले अवश्य सिद्धि प्राप्त हुनेछ ॥५८–६३॥

मैले यो पवित्र तीर्थ र लिङ्गको महात्म्य तिमीलाई बताएँ। जुन मानिसले भक्तिपूर्वक यो महात्म्य आनन्दसित सुन्दछन्, ती मानिसहरू सुखैसुखले भरिपूर्ण भएको इन्द्रनगरीमा जान पाउँछन् ॥६४॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा शचीतीर्थ र इन्द्रेश्वरको माहात्म्यनामक अन्ठानब्बेऔं अध्याय पूरा भयो।

---

१८. महोत्सवैः प्रसेवयन् इति न.सं.पु.पाठः।  १९. गरिष्ठान् इति न.सं.पु.पाठः।

# नवनवतितमोऽध्यायः

## गन्धर्वतीर्थभालेश्वरशिवलिङ्गयोर्माहात्म्यम्

### स्कन्द उवाच

भूयो ययौ विरूपाक्षो निकुञ्जाद्रिं घटोद्भव। शचीतीर्थे ततः स्नात्वा चैश्वर्यवान् विकिल्विषः ॥१॥
ततो गन्धर्वतीर्थेऽसौ स्नात्वा च विधिवत्पुनः। भालेश्वरं समानर्च निकुञ्जाचलशेखरे ॥२॥
माघकृष्णनवम्यां स सम्पूज्य जागृतो निशि[1]। पप्रच्छ तन्माहात्म्यञ्च नेमुनिं तीर्थलिङ्गयोः ॥३॥

### विरूपाक्ष उवाच

मुनिशार्दूल विप्रेश भूयोऽपि भवतोऽधुना। एतल्लिङ्गस्य माहात्म्यं श्रोतुमिच्छाम्यहं विभो ॥४॥
तीर्थमेततद् विशेषेण केन प्रकाशितं पुरा। किं प्राप्तञ्च फलञ्चाऽत्र वद सर्वं[2] मुनीश्वर ॥५॥

### नेमुनिरुवाच

सती पञ्चत्वमापन्ना क्रुद्धा दक्षस्य हेतुतः। तच्छवञ्च समादाय रुद्रोऽभ्रमन्महीं पुरा ॥६॥
ततोऽपतच्च तद्देहाद् भालमत्राद्रिशेखरे। लिङ्गं तत्र समुभूतं[3] तस्माद्भालेश्वरः स्मृतः ॥७॥
भुक्तिमुक्तिप्रदः साक्षाद् गन्धर्वैः पूजितो भवः। दिव्यदेहो भवेन्मर्त्यश्चैतल्लिङ्गसमर्चनात्[4] ॥८॥
लीलावती नदी श्रेष्ठा सुखस्रवा तथाऽपरा। तयोर्हि सङ्गमे तीर्थे दिव्यदेहफलप्रदे ॥९॥
कदाचिद्दिवसे दुःखी स्वर्गाद् भ्रष्टः पुराऽभवत्। सुमुखो नाम गन्धर्वो रम्भाशापादिहाऽऽययौ ॥१०॥
फाल्गुनशुक्लपक्षस्य सप्तम्यां सुतिथौ मुदा[5]। दुःखातुरस्तदैकाकी सस्नौ तत्र यथासुखम् ॥११॥
ददर्श स्वां तनुं दिव्यां स्नानात्स सुन्दरीं वराम्। अपश्यद् गालवं दान्तं ध्यानस्थञ्च मुदा युतम्[6] ॥१२॥
सोऽपृच्छत्तं वपुर्नम्रः स्वर्गगमनहेतुकम्। प्राग्निवेद्य च स्वागांसि[7] रम्भाशापं त्रिविष्टपे ॥१३॥

---

## अध्याय - ९९

### गन्धर्वतीर्थ र भालेश्वर शिवलिङ्गको माहात्म्य

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! त्यसपछि विरूपाक्ष निकुञ्जादिमा गए। तिनले शचीतीर्थमा स्नान गरे र पापमुक्त भई ऐश्वर्यशाली बने। त्यसपछि यिनले गन्धर्वतीथ्मा विधिपूर्वक स्नान गरे। निकुञ्जाचलको शिखरमा गएर फेरि उनले भालेश्वरको पूजा गरे। माघकृष्ण नवमीका दिन उनले पूजा गरेर राती जाग्राम बसे। उनले त्यस तीर्थ र लिङ्गको महात्म्य नेमुनिसित सोधे। विरूपाक्षले भने– हे मुनिश्रेष्ठ ब्राह्मण ! यो लिङ्गको महात्म्य म फेरि पनि अहिले सुन्न चाहन्छु। विशेष गरी यस तीर्थलाई कसले अघि प्रकाशित गऱ्यो ? कसले के फल पायो ? हे मुनिश्वर ! यो सबै यहाँ बताउनुहोस् ॥१-५॥

नेमुनिले भन्नुभयो– दक्षको कारणले गर्दा अघि रिसाएर सतीदेवी मरेकी थिइन्। उनको लास लिएर भगवान् शङ्कर पृथ्वीमा घुम्नुभएको थियो। त्यसैबेला उनको शरीरबाट यस पर्वतको शिखरमा निधार खस्यो। त्यहीं लिङ्ग पैदा भयो। त्यसैले यसको नाम भालेश्वर रहेको हो ॥६-७॥

हे विरूपाक्ष ! यस शिवलिङ्गलाई साक्षात् गन्धर्वहरूले पूजा गरे। यसको पूजा गर्नाले भुक्ति तथा मुक्ति प्राप्त हुन्छ, जसले यो लिङ्गको स्पर्श गर्छ त्यसको शरीर दिव्य हुन्छ। लीलावती नाम गरेकी श्रेष्ठ नदी र सुखस्रवा नाम गरेकी अर्की नदी छन्। ती दुई नदीको सङ्गममा यो तीर्थ छ। यसले मानिसलाई दिव्य शरीर प्रदान गर्दछ। कुनै बेला रम्भाको सराप परेर सुमुख नाम गरेको गन्धर्व स्वर्गबाट भ्रष्ट भएर दुःखित हुँदै यसै ठाउँमा आइपुग्यो। फाल्गुन शुक्लपक्षको सप्तमीका दिन दुःखी त्यस गन्धर्वले एक्लै त्यस ठाउँमा आनन्दसित स्नान गऱ्यो ॥८-११॥

त्यहाँ स्नान गरेपछि उसले आफ्नो शरीरलाई अत्यन्त सुन्दर देख्यो। उसले तयहाँ आनन्दसित ध्यानमा संलग्न भएका दानी गालव ऋषिलाई देख्यो। उसले स्वर्गमा भएको रम्भाको सराप र आफ्ना अपराधहरू ऋषिलाई निवेदन गऱ्यो र स्वर्ग जाने बाटोका बारेमा उसले ऋषिलाई नम्र भएर सोध्यो ॥१२-१३॥

---

१. पूज्य जातृतवान्निशि इति न.सं.पु.पाठः।
२. एतद्वद इति न.सं.पु.पाठः।
३. तत्रैव सम्भवं लिङ्गम्, इति न.सं.पु.पाठः।
४. ....स्पृशाद् द्विज इति न.सं.पु.पाठः।
५. च तिथौ वरे इति न.सं.पु.पाठः।
६. चालभन्मुदम् इति न.सं.पु.पाठः।
७. स्वामागांसि इति न.सं.पु.पाठः।

सुमुख उवाच

भगवन्मुनिशार्दूल ! शापबद्धस्य मेऽधुना। रम्भाया व्यसनं स्वर्गे मद्व्यसनं निशामय ॥१४॥

शक्रस्य पुरतः स्वर्गे ननृतुश्चाऽप्सरोगणाः। तालैर्गीतैर्महोल्लासैर्नित्यं शक्रप्रतोषका ॥१५॥

एकदा दिवसे रम्भा नृत्ये बहुकलान्विते। मामुद्दिश्य च विव्वोकैः पस्पर्श सुस्मितानना[८] ॥१६॥

पुष्पधन्वा च मां तत्र पुष्पेषुभिर्जघान वै। तस्या भ्रूकार्मुकस्निग्धकटाक्षप्रेरितैर्भृशम् ॥१७॥

मुमोहाऽहन्ततः स्वान्ते कटाक्षव्रणचिह्नितः[९]। तल्लालसायुतश्चाहं कामतप्तोऽभवं तदा[१०] ॥१८॥

ततो नृत्यावसाने सा गृहान्तरं विवेश तत्। शक्रेण सह सम्मुद्य रम्भा विनिर्ययौ निशि ॥१९॥

याते चैवार्द्धरात्रे तां कामतुष्टामजानता[११]। सङ्गृह्य चुम्बिता प्रोच्य प्रिये स्वागतमस्तु ते[१२] ॥२०॥

क्रोधेन मूर्च्छिता रम्भा ततः शापं ददौ च मे। धिग्धिगिति तदा प्रोच्य[१३] प्राकृतोऽसि न मां स्पृश ॥२१॥

अहं सुमुख ! रे यस्माद् गृहीता च त्वयाऽधुना। अविचार्येन्द्रपत्नीयं मूढ ! कामातुरः कथम् ॥२२॥

मर्त्यलोकनिवासी त्वं भव गन्धर्व ! चाऽद्यतः। स्वर्गलोकं परित्यज्य शैलारण्यचरोऽनिशम् ॥२३॥

एतच्छापादिह प्राप्तः संवत्सरशतं गतम्। ततः प्रभृति चाऽद्यादि वनेचरो भवाम्यहम् ॥२४॥

कथं मोक्ष्यामि तच्छापाद्दुःखातुरो मुने ततः। तदुपायं वदार्याशु स्वर्गसोपानहेतुकम् ॥२५॥

गालव उवाच

एतच्छिलोच्चये लिङ्गं भक्त्याऽर्चय सुरात्मज। प्राप्य तस्मात्फलं स्वर्गं गमिष्यसि न संशयः ॥२६॥

अस्मिन्तीर्थेऽनिशं स्नात्वा तमर्चय हि भक्तितः। नाऽविर्भूतः शिवो यावत्ततः फलं प्रलप्स्यसे ॥२७॥

---

सुमुखले भन्यो – हे ऋषि ! सरापलेबाँधिएको मेरो र रम्भाको स्वर्गमा भएको आपत्तिको विषयमा सुन्नुहोस्। स्वर्गमा इन्द्रको अगाडि अप्सराहरू नाचिरहेका थिए। उनीहरूले ताल, गीत र उत्सवद्वारा सधैं इन्द्रलाई प्रसन्न तुल्याउँथे। एकदिन धेरै कलाले युक्त भएको नाचमा मुसुक्क हाँसेकी रम्भाले मलाई लक्ष्य गरेर शृङ्गारभावले हेरिन्। त्यसबेला कामदेवले पनि रम्भाको आँखीभौंरूपी धनुषबाट छुटेका फूलका बाणहरूले जोडसित हिर्काए। हे प्रभु ! हृदयमा लागेको घाउको चोटले गर्दा म मूर्च्छा परें। वैद्यको खोजी गर्ने लालसाले म त्यसको पछि लागें। नाच सकिएपछि रम्भा अर्को घरमा पसिन्। रम्भा रातमा इन्द्रलाई खुशी तुल्याएर बाहिर निस्किइन् ॥१४-१९॥

आधा रातमा भोगबाट तुष्ट भएर आएकी भन्ने नजानेर रम्भालाई समातेर मैले 'हे प्रिया ! तिमीलाई स्वागत छ' भन्दै चुम्बन गरें। रीसले मूर्च्छा परेकी रम्भाले 'नछोऊ, तिमीलाई धिक्कार छ' भन्दै पशुतुल्य भएको मलाई सराप दिई। हे मूर्ख सुमुख ! तैले यो इन्द्रकी पत्नी हो भन्ने विचारै नगरीकन कामातुर भएर मलाई अहिले यसरी आक्रमण गरिस् ?। हे गन्धर्व ! आजदेखि तँ स्वर्गलोक छाडेर मर्त्यलोकको बासिन्दा भएस्। त्यहाँ तैंले सधैंभरि पहाड र जङ्गलमा हिंड्नु परोस्। यही सरापले गर्दा म यहाँ आएको हुँ। सय वर्ष बितिसके। त्यसै समयदेखि आजसम्म वनेचर भएर बसेको छु।हे मुनि ! त्यसै सरापबाट दुःखित भएको छु, मेरो मुक्ति कसरी हुन्छ ? हे आर्य ! स्वर्गको भ्याङ भएको त्यो उपाय मलाई तुरुन्त बताइदिनुहोस् ॥२०-२५॥

गालवले भने – हे गन्धर्व ! यस पर्वतकोथुम्काको शिखरमा रहेको शिवलिङ्गको पूजा गर, त्यसबाट फल प्राप्त गरेर तिमी स्वर्ग जान सक्छौ, यसमा शङ्का छैन। यस तीर्थमा सधैं स्नान गरेर भक्तिपूर्वक भगवान् शिवको पूजा गर। जहाँसम्म शिवजी प्रकट हुनुहुन्न त्यहाँसम्म त्यस लिङ्गको पूजा गरिराख, अनि फल पाउनेछौ ॥२६-२७॥

---

८. समाप्रक्षत् स्मितानना इति न.सं.पु.पाठः।

९. व्रणाङ्किताच्चिरं विभो इति न.सं.पु.पाठः।

१०. तद्भिषग्लालसीभूतश्चान्वेषितश्च तद्गतिम् इति न.सं.पु.पाठः।

११. याते चैवार्द्धरात्रौ तां कामतुष्यमजानतः इति न.सं.पु.पाठः।

१२. संगृह्य चुम्बितोऽहं तां कृत्वेति स्वागतं प्रिये इति न.सं.पु.पाठः।

१३. प्रोक्त्वा इति न.सं.पु.पाठः।

नेमुनिरुवाच

तदाज्ञाञ्च समादाय गन्धर्वः प्रसभं द्विज। निकुञ्जाद्रेरधोभागे चैतल्लिङ्गमपूपुजत् ॥२८॥
फाल्गुने चासितेऽष्टम्यामेकाब्दान्ते महेश्वरः। आविर्बभूव चैतस्मिन् तं भक्तं प्रोक्तवान् यथा[१४] ॥२९॥

भालेश्वर उवाच

भो गन्धर्व वरं मत्तो वरय त्वं यथेप्सितम्। तुष्टोऽहमिह ते भक्त्या दास्यामि तद्वरं ध्रुवम् ॥३०॥

सुमुख उवाच

नमस्ते भगवन् रुद्र ! सर्वभूतदयाकर। भक्तानां वेदनाज्ञोऽसि भवन्तं किं वदाम्यहम् ॥३१॥
रम्भाशापेन चाऽत्राऽहं प्रेषितस्त्रिदिवाद्विभो। तत्स्थानं लब्धुकामोऽहं भवामि किङ्करो हि ते ॥३२॥
स्वर्गप्राप्तिवरं याचे हे विभो ! भवतो द्रुतम्। प्रभुत्वं नैव भूतेश ! स्वप्नलब्धं धनं यथा ॥३३॥

भालेश्वर उवाच

शप्तस्त्वञ्च यया[१५] वत्स ! क्रीडिष्यसि तया सह। स्वर्गे सुखं हि गन्धर्व ततो मे किङ्करो भव ॥३४॥

नेमुनिरुवाच

इति दत्त्वा वरं विप्र ! गन्धर्वाय तदा द्रुतम्। प्रदर्श्याङ्गं स्वकीयं तदेतल्लिङ्गे तिरोदधे ॥३५॥
ततो रुद्राज्ञया देवाश्चाऽत्राऽऽगत्य मुदान्विताः। विमाने तं समास्थाय निन्युते स्त्रिदिवं तदा ॥३६॥
रम्भा ददर्श तं स्वर्गे देवानाञ्च पुरोगतम्। सा सद्यो मुमुहे[१६] रम्भा प्रेक्ष्य यानागतं द्विज ॥३७॥
आलिलिङ्ग सभामध्ये कामातुराऽऽगतं[१७] हि सा। प्रोवाच सादरं दोर्भ्यां स्वागतं हे प्रियेति च ॥३८॥
तस्याश्चेष्टां तदालोक्य शक्रः क्रोधेन चाऽवदत्। देवेभ्यस्त्वरितं विप्र ! सुधर्मायां स्थितो यदा ॥३९॥

---

नेमुनिले भन्नुभयो- गन्धर्वले निकुञ्ज पर्वतको तल्लो भागमा रहेको यस लिङ्गलाई खूबसित पूजा गऱ्यो एक वर्षपुगेपछि फागुनकृष्ण अष्टमीका दिन यसै लिङ्गबाट भगवान् शङ्करको प्रादुर्भाव भयो र उहाँले आफ्नो भक्त त्यस गन्धर्वलाई भन्नुभयो ॥२८-२९॥

भालेश्वरले भन्नुभयो- हे गन्धर्व ! म तिम्रो भक्तिबाट सन्तुष्ट भएँ, मसित इच्छा लागेको वर माग, अवश्य म तिमीलाई चाहेको वर दिन्छु ॥३०॥

सुमुखले भने- हे भगवान् ! प्राणीमाथि दया गर्ने हे रुद्र ! हजुर भक्तको पीडा बुझ्नुहुन्छ, म हजुरलाई के भनूँ ? हे प्रभु ! रम्भाको सरापले गर्दा स्वर्गबाट म यहाँ आएको छु। म त्यही ठाउँलाई फेरि प्राप्त गर्न चाहन्छु। म हजुरको सेवक हुँ। हे सर्वव्यापक परमात्मा! अहिले म छिट्टै हजुरबाट स्वर्गप्राप्तिरूप वर माग्दछु। हे भूतेश ! मलाई सपनामा पाएको धनजस्तो स्वर्गको क्षणिक सम्प्रभुता चाहिएको छैन ॥३१-३३॥

भालेश्वरले भन्नुभयो- हे बाबु ! जसले तिमीलाई सराप दियो, त्यससित तिमी स्वर्गमा सुखपूर्वक खेल्न पाउनेछौ, तिमी मेरो सेवक बन ॥३४॥

नेमुनिले भन्नुभयो- हे विरूपाक्ष ! यसरी भगवान् शङ्करले गन्धर्वलाई तुरुन्त वरदान दिएर आफ्नो शरीर उसलाई देखाउँदै यसै लिङ्गमा अन्तर्धान हुनुभयो ॥३५॥

भगवान् शङ्करको निर्देशन अनुसार खुशी हुँदै देवताहरू यहाँ आएर त्यस गन्धर्वलाई विमानमा राखी स्वर्ग लगे। हे विरूपाक्ष ! यानमा बसेर देवताहरूको अगाडि लागी स्वर्गमा आएका गन्धर्वलाई देखेर रम्भा तुरुन्त मोहित भइन्। सभाकै बीचमा कामातुर भएर त्यस रम्भाले हे प्रिय ! हजुरलाई स्वागत छ भन्दै दुई हातले अङ्कमाल गरिन्। हे विरूपाक्ष ! सुधर्मा नाम गरेको सभामा बसेका इन्द्रले रम्भाको त्यस्तो गतिविधि देखेर रिसाउँदै देवताहरूलाई भन्न लागे ॥३६-३९॥

---

१४. तस्मै व्याचष्ट भक्तिने इति न.सं.पु.पाठः।
१५. सद्यो मुमोह सा इति न.सं.पु.पाठः।
१६. यया त्वं शापितो वत्स, इति न.सं.पु.पाठः।
१७. कामातुरा श्रुतम् इति न.सं.पु.पाठः।

इन्द्र उवाच

पश्यन्तु भो सुराश्चष्टां[१८] रम्भाया इह तस्य च। ममाऽध्यक्ष्ये सभामध्ये तमालिङ्गति सा दृढम् ॥४०॥

अवजानाति सा नोऽत्र यतो देवास्ततो बहिः। यूयं निष्कासयध्वं तां मत्पुरात्तं पृथक् पृथक् ॥४१॥

बृहस्पतिरुवाच

मां कुप्यतां त्वया शक्र ! वरो दत्तो हि शम्भुना। प्राप्तव्यं तेन कुत्राऽपि चाऽवश्यं तपसः फलम् ॥४२॥

निकुञ्जाद्रौ पुरा चाऽस्मै दत्तो वरश्च शूलिना। एतस्याः शापतो दुःखात्तपः स्थिताय सेविने[१९] ॥४३॥

एतया सह सम्भोगं कृत्वा वर्षसहस्रकम्। भविष्यति ततश्चाऽसौ शङ्करानुचरः पुनः ॥४४॥

नेमुनिरुवाच

ततः शक्रे विकोपे स मुमुदे हि तया सह। व्याप्य सहस्रवर्षं स चाऽभूच्च प्रमथः पुनः ॥४५॥

एतद्धि कथितं विप्र ! भालेश्वरप्रशंसनम्[२०]। तीर्थस्यैव च माहात्म्यं सर्वाशापूरकस्य च[२१] ॥४६॥

एतल्लिङ्गं येऽर्चयन्ति स्नात्वा तीर्थे च भक्तितः। मनोभिरीप्सिताञ्चाऽऽशां लब्ध्वा गच्छन्ति शाङ्करम् ॥४७॥

भूयो विरूपाक्ष ! हि गच्छ चातो याम्यां दिशं योजनमात्रमर्द्धम्।
यत्र स्थितो गुप्तहरो गुहायां नद्याः प्रभायाः प्रभवो यतो वै ॥४८॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां भालेश्वरगन्धर्वतीर्थमाहात्म्यं नाम नवनवतितमोऽध्यायः ॥९९॥

---

इन्द्रले भने – हे देवता हो ! रम्भा र त्यस गन्धर्वको चरित्र यहाँ हेर। म अध्यक्ष भएर बसेको यो सभामा रम्भा त्यस गन्धर्वलाई खूबसित आलिङ्गन गरिरहेकी छ। हे देवता हो ! त्यसले हामीहरूको अपमान गरिरहेकी छ। त्यसैले मेरो शहरबाट ती दुईलाई अलग–अलग हुने गरी निकालिदेओ ॥४०–४१॥

बृहस्पतिले भन्नुभयो – हे इन्द्र ! तपाईँ न रिसाउनुहोस्, त्यसलाई भगवान् शङ्करले वर दिनुभएको छ। जहाँ बसे तापनि तपस्या गर्ने व्यक्तिले तपस्याको फल पाउँछ नै। अघि निकुञ्ज पर्वतमा रम्भाको सरापबाट पीडित भएर तपस्यामा संलग्न त्यस भक्तलाई भगवान् शङ्करले वर दिनुभएको थियो। एक हजार वर्षसम्म यस रम्भासँग सहवास गरिसकेपछि यो गन्धर्व फेरि शङ्करको सेवक भएर बस्नेछ ॥४२–४४॥

नेमुनीले भन्नुभयो – त्यसपछि इन्द्रको रीस हरायो। त्यो गन्धर्वले रम्भाका साथ एक हजार वर्षसम्म रमण गरेपछि प्रथमगण बन्न पुग्यो। हे विरूपाक्ष ! मैले तिमीलाई सम्पूर्ण आशा पूर्ण गर्ने ऋद्ध स्वरूप भएका भालेश्वर भगवानको लिङ्ग र तीर्थको महात्म्य बताएँ। जसले भक्तिपूर्वक तीर्थमा स्नान गरेर भालेश्वर लिङ्गको पूजा गर्छन्, तिनीहरूले सम्पूर्ण कामना पूर्ण गरी शिवजीको लोकमा जान पाउँछन् ॥४५–४७॥

हे विरूपाक्ष ! जुन गुफामा भगवान् शङ्कर लुकेर बस्नुभएको छ, जहाँबाट प्रभा नाम गरेकी नदी प्रदा भएकी छन्, यहाँ देखि आधा पोजन पर दक्षिण दिशामा रहेको त्यस ठाउँमा तिमी जाऊ ॥४८॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा भालेश्वर र गन्धर्वतीर्थको माहात्म्यनामक
उनान्सयौं अध्याय पूरा भयो।

---

१८. भक्तिने इति न.सं.पु.पाठः।
१९. तुभ्यं भालेश्वरस्य कोपिनः इति न.सं.पु.पाठः।
२०. भो देवा दृश्यतां, इति न.सं.पु.पाठः।
२१. सर्वाशासम्प्रदस्य च इति न.सं.पु.पाठः।

# शततमोऽध्यायः

## सिद्धतीर्थगुप्तेश्वरशिवलिङ्गयोर्माहात्म्यम्

स्कन्द उवाच

स्नात्वा गन्धर्वतीर्थेऽसौ भालेश्वरमपूपुजत्। तत आशा प्रपूर्णाऽभून्मनसा चिन्तिता च या ॥१॥
ततोऽगमदितो याम्ये दिशि द्विक्रोशके मुने। विरूपाक्षः पुनः शीघ्रं नेमुनिना समं मुदा ॥२॥
कुञ्जाद्रिशेखरे लिङ्गमर्चयामास[1] भक्तितः। सिद्धतीर्थे मुदा स्नात्वा गुप्तेश्वरं प्रपूज्य च ॥३॥
एतत्तीर्थस्य माहात्म्यं लिङ्गस्य तद् विरूपदृक्। माघकृष्णदशम्यां स विनिद्रोऽपृच्छदादरात्[2] ॥४॥

विरूपाक्ष उवाच

नेमुने ! मुनिशार्दूल बहुवार्ताविशारद। एतत्कथं समुद्भूतं गुहायां लिङ्गमुत्तमम् ॥५॥
सरितश्च प्रभाख्यायास्त्वयोक्तायास्तथैव च। तयोश्चैव हि माहात्म्यं वद मे मुनिपुङ्गव ॥६॥

नेमुनिरुवाच

वृत्रासुरेण रुद्रोऽसौ चाऽभिद्रुतो भृशं पुरा। व्याजवृत्तिं समाविश्य तद्वरं च परीक्षितुम् ॥७॥
तद्भयाच्च महारुद्रश्चैतस्यां प्रविवेश वै। परिभ्रम्य रसां सर्वां सशैलवनकाननाम् ॥८॥
देहप्रभां सुविस्तार्य चैतत्पर्वतगह्वरे। रहसि[3] संस्थितो रुद्र एतस्यां निर्ज्जनो विभुः ॥९॥
प्रभायाः संभवो यस्मास्तस्मात्प्रभावती नदी। बहुकल्लोलिनी दिव्या सा प्रोवाहाऽनिशं शुभम् ॥१०॥
विष्णुना च हते दैत्ये शङ्करो हि विनिर्ययौ। एतल्लिङ्गं समास्थाय स्वमेकांशं ततोऽत्र च ॥११॥
देवर्षयस्तथा नागाः प्रमथा योगिनीगणाः। तदाऽऽगत्याऽत्र तिष्ठन्ति चाऽद्यादि सेवया विभोः ॥१२॥
प्रभावती नदी श्रेष्ठा शिलारसा तथाऽपरा। तयोश्च सङ्गमे विप्र ! सिद्धतीर्थमुदाहृतम् ॥१३॥

---

## अध्याय - १००

### सिद्धतीर्थ र गुप्तेश्वर शिवलिङ्गको महिमा

कार्तिक स्वामीले भन्नुभयो - विरूपाक्षले गन्धर्व तीर्थमा स्नान गरेर भगवान् भालेश्वरको पूजा गरे, त्यसपछि उनले मनमा जे चिताएका थिए, त्यो आशा पूर्ण भयो। त्यसपछि नेमुनिलाई साथमा लिएर विरूपाक्ष दक्षिणपट्टि दुई कोश पर रहेको क्षेत्रमा हर्षित हुँदै तुरुन्त गए। कुञ्जाद्रिको शिखरमा उनले भक्तिपूर्वक त्यस गुप्तेश्वर लिङ्गको पूजा गरे। प्रसन्न भएर उनले सिद्धतीर्थमा स्नान गरी गुप्तेश्वरको पूजा गरे। हे विरूपाक्ष ! उनले माघकृष्ण दशमीका दिन जाग्राम बसेर यो तीर्थ र लिङ्गको माहात्म्य नेमुनिसँग आदरपूर्वक सोधे ॥१-४॥

विरूपाक्षले भने - हे मुनिश्रेष्ठ नेमुनि ! हजुर सबै कुराको ज्ञाता हुनुहुन्छ। गुफामा उत्तम लिङ्ग कसरी पैदा भयो ? यो कुरा बताउनुहोस्। हे मुनिश्रेष्ठ ! प्रभा नाम गरेकी नदी र तपाईंले भन्नुभएको अर्को नदीको सङ्गमको माहात्म्य मलाई बताउनुहोस् ॥५-६॥

नेमुनिले भन्नुभयो - अघि वृत्रासुरले भगवान् शङ्करलाई उहाँले दिएको वरको परीक्षाका लागि छल गरेर खुबसित लखेटेको थियो। त्यसको डरले गर्दा भगवान् शङ्कर पहाड, वन र जङ्गलले भरिएको सम्पूर्ण पृथ्वी घुमेर यसै गुफामा प्रवेश गर्नुभएको थियो। अघि भगवान् शङ्कर शरीरको तेजलाई विस्तार गरेर गुप्तरूप लिई एक्लै यस गुफामा बस्नुभएको थियो। भगवान्को प्रभाबाट उत्पन्न भएको हुनाले ठूलो तरङ्गले युक्त भएको दिव्य प्रभावती नदी पैदा भएर निरन्तर बगिरहेको छ ॥७-१०॥

विष्णुले वृत्रासुरलाई मारेपछि आफ्नो उक्त अंशले युक्त भएको शिवलिङ्ग यहाँ राखेर भगवान् शङ्कर निस्कनुभयो। देवता, ऋषि, नाग, प्रथमगण र योगिनीहरू त्यसबेला यहाँ आएर आजसम्म महादेवको सेवा गरेर बसेका छन्। हे विरूपाक्ष ! त्यहाँ प्रभावती नाम गरेकी नदीका साथ सिद्धरसा नदी छन्। ती दुईको सङ्गमलाई सिद्धतीर्थ भनिन्छ ॥११-१३॥

---

१. लिङ्गं पूजितवांश्च, इति न.सं.पु.पाठः।
२. विनिद्रोऽपृच्छदाद्रितः , इति न.सं.पु.पाठः।
३. गुप्तेन, इति न.सं.पु.पाठः।

आसीत् कश्चिद् द्विजः पूर्वं विद्याचौर्येण चाऽऽगसा। पुनर्जन्मन्यसौ वत्स बभूव[४] ब्रह्मराक्षसः ॥१४॥
क्षुत्पिपासातुरो रक्षः परिभ्रम्य महीतलम्। प्राप्तवान्तीर्थमेतत्स पपौ चात्र जलं सुखम् ॥१५॥
तज्जलस्पर्शनात्पानात्त्यक्तरक्षः कलेवरः। अभवद्विप्रदेहोऽसौ यथापूर्वं स राक्षसः ॥१६॥
ब्रह्मवर्चोज्ज्वलद्देहश्चाहिवन्मुक्तकञ्चुकः। जातिस्मरणविद्धात्मा श्रुतिशास्त्रविशारदः ॥१७॥
भरद्वाजमुनिं तत्र शिवदासो ददर्श तम्। प्रणम्य शिरसा भक्त्या पप्रच्छ मुक्तिहेतुकम् ॥१८॥
नमस्ते भगवन् तुभ्यमाजन्मोपप्लवस्त्वहम्। कथं भवाब्धिं गम्भीरं तरामि च वद प्रभो ॥१९॥

भरद्वाज उवाच

सत्यमुक्तं त्वया वत्स चैवमेव शरीरिणाम्। दुःखमूलो हि संसारस्तथाऽजस्रं[५] दिवौकसाम् ॥२०॥
अत एव सदा धीमान्संसारे सदुपासनात्। तारयेदात्मनात्मानं तद्दुःखं विनिवर्त्तते ॥२१॥
त्वमप्यत्र पुनः स्नात्वा गुप्तेश्वरं प्रपूजय। कुब्जशैलगुहायां वै क्षिप्रं सिद्धयति ते फलम् ॥२२॥

नेमुनिरुवाच

भूयः स्नात्वा ततो विप्रः सिद्धतीर्थे हि भक्तितः। कुब्जाद्रिं स समारुह्य तद्गुहां प्रविवेश च ॥२३॥
आनर्च विधिवल्लिङ्गं भक्त्या पञ्चोपचारकैः। उषित्वैकनिशां प्रातः तपःकृष्णकुहुं पुनः ॥२४॥
रुद्रदूताः समभ्येत्य रुद्राज्ञया च सत्वरम्। समास्थाय च याने तं निन्युर्लोकं शिवस्य च ॥२५॥

---

अघि कुनै शिवदास ब्राह्मण थिए। तिनले पूर्व जन्ममा विद्या चोरेका थिए। त्यसै अपराधले गर्दा ती ब्रह्मराक्षस भएर पैदा भए। भोक र प्यासले आत्तिएको त्यो बह्मराक्षस पृथ्वीभरि घुम्दै यस तीर्थमा आइपुग्यो र त्यसले आनन्दसित जल पियो। त्यस तीर्थको जलको स्पर्श र जलपानले गर्दा राक्षसको शरीरलाई त्याग गरेर यो राक्षस ब्राह्मणको शरीर लिन पुग्यो ॥१४–१६॥

त्यसपछि ती ब्राह्मणको शरीर ब्रह्मतेजले गर्दा काँचुली छोडेको सर्पजस्तै उज्यालो भयो। तिनको आत्माले पूर्वजुनीको स्मरण गऱ्यो। ती ब्राह्मण श्रुति तथा शास्त्रका ज्ञाता शिवदास नामबाट प्रसिद्ध भए। त्यहाँ शिवदासले भरद्वाजमुनिलाई देखेर शिरले प्रणाम गरी भक्तिपूर्वक कसरी मुक्ति प्राप्त गर्न सकिन्छ भनी त्यसको कारण सोधे– हे भगवन्! तपाईंलाई नमस्कार छ। म जन्मदेखि नै दुःखमा डुबेको छु। हे प्रभु! कसरी गहिरो समुद्र तर्न सक्छु, मलाई बताइदिनुहोस् ॥१७–१९॥

भरद्वाजले भन्नुभयो – हे बाबु! तिमीले साँचो भन्यौ, देहधारीहरको यस्तै स्थिति हुन्छ, संसार भनेकै दुःखको जड हो। देवताहरूको पनि नित्य यस्तै स्थिति हुन्छ। यसैले यहाँ बुद्धिमान्ले सत्को उपासनाबाट आफूले आफूलाई नै तार्नुपर्छ। त्यसो गऱ्यो भने संसारको त्यो दुःख हटेर जान्छ। तिमीले पनि यसै तीर्थमा स्नान गरेर कुब्जशैलको गुफामा बसेका गुप्तेश्वर भगवान्को पूजा गर। यसो गऱ्यौ भने तिम्रो मनोरथ तुरुन्त सिद्ध हुनेछ ॥२०–२२॥

नेमुनिले भन्नुभयो – त्यसपछि ती शिवदास भक्तिपूर्वक सिद्धतीर्थमा स्नान गरेर कुब्ज पर्वतमा आरोहण गरे अनि त्यो गुफामा प्रवेश गरे। एक रात त्यहाँ बसेर माघे औंसीका दिन बिहान विधिपूर्वक सभक्ति पञ्चोपचार विधिले उनले शिविलिङ्गको पूजा गरे। भगवान् शङ्करको निर्देशन अनुसार रुद्रका दूतहरू त्यहाँ आएर तुरुन्त तिनलाई यानमा राखेर शिवजीको लोकमा लगे ॥२३–२५॥

---

४. चाभूच्च, इति न.सं.पु.पाठः।
५. संसारस्त्वाप्यजस्रम्, इति न.सं.पु.पाठः।

सिद्धतीर्थे च यः स्नात्वा कुब्जशैलं च लङ्घयन्[६]। पूजयति च यदा लिङ्गं रुद्रलोकं प्रगच्छति ॥२६॥
गुप्तेश्वरस्य माहात्म्यं मया प्रोक्तं पुनः शृणु[७]। मुकुन्दाद्रिनितम्बं च गच्छ तत्त्वं वदामि ते ॥२७॥
भूयो व्रज त्वं हि विरूपदृग्वै पूर्वोत्तरे योजनदूरदेशे[८]।
यत्र स्थितो विप्र तिलेश्वरोऽसौ तीर्थं मनःश्रीरितिनामकं च[९] ॥२८॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये तीर्थयात्रायां सिद्धतीर्थगुप्तेश्वरयोर्माहात्म्यं नाम शततमोऽध्यायः ॥१००॥

---

जसले सिद्धतीर्थमा स्नान गरेर कुब्ज पर्वतमा चढी यस लिङ्गको जब पूजा गर्छ त्यो व्यक्ति रुद्रलोक जान पाउँछ। गुप्तेश्वरको माहात्म्य मैले तिमीलाई बताएँ। अब मुकुन्दपर्वतको फेदीको महिमा बताउँछु, तिमी त्यहाँ जाऊ ॥२६-२७॥

हे विरूपाक्ष ! अब तिमी यहाँबाट चारकोस पढा रहेको ईशान दिशामा जाऊ। हे ब्राह्मण ! त्यहाँ कुलेश्वर महादेव रहनुभएको छ, त्यहाँ मनश्री नामको तीर्थ रहेको छ ॥२८॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा सिद्धतीर्थ र गुप्तेश्वरको माहात्म्यनामक सयौं अध्याय पूरा भयो।

परम्बा वाग्वादिनी भगवतीको असीम अनुकम्पाबाट पोरकनी पाल्पा निवासी पतिव्रताशिरोमणि स्वर्गीय माताश्री दिव्यलक्ष्मी ढकाल र सज्जनमुकुटमणि स्वर्गीय पिताश्री चूडामणि ढकालका कनिष्ठ पुत्र नेपाल संस्कृत विश्वविद्यालय सेवा आयोगका अध्यक्ष प्रा. डा. वेणीमाधव ढकालद्वारा गरिएको महर्षि वेदव्यासरचित स्कन्दमहापुराणअन्तर्गत हिमवत्खण्डको
अभिनव सम्पादन एवं नरहरिनामक नेपाली भाषानुवादमा
चौसट्ठीलिङ्ग प्रकरण पूरा भयो।

---

६. समारुहन्, इति न.सं.पु.पाठः।
७. प्रोक्तमिति पुनश्च ते, इति न.सं.पु.पाठः।
८. योजनमात्रकेऽतः, इति न.सं.पु.पाठः।
९. तीर्थं मनःश्रीस्वभिधानकञ्च, इति न.सं.पु.पाठः।

# एकोत्तरशततमोऽध्यायः

मनःश्रीतीर्थगुप्तेश्वरशिवलिङ्गयोर्महिमा

स्कन्द उवाच

सिद्धतीर्थे मुने स्नात्वा प्रेक्ष्य गुप्तेश्वरं द्विज। पूर्वजन्मकृतैपापैर्मुक्तः स्याद् ज्ञानवान्नरः[1] ॥१॥
भूयोऽगमद्विरूपाक्षो नेमुनिना समं मुने। मुकुन्दगिर्यधोभागे यत्र तिलेश्वरो विभुः ॥२॥
स मनःश्रीमहातीर्थे सस्नौ भक्त्या विरूपदृक्। तिलेश्वरं समानर्च पञ्चोपचारकैर्मुदा ॥३॥
एकादश्याञ्च माघस्य कृष्णपक्षस्य कुम्भज। महत्या चैव तद्भक्त्या जजाप तन्मनुं निशि ॥४॥
उषित्वैकां निशान्तत्र शिवनाम पठन्पुनः। पप्रच्छ नेमुनिञ्चाऽसौ माहात्म्यं तीर्थलिङ्गयोः ॥५॥

विरूपाक्ष उवाच

मुनिशार्दूल त्वत्तोऽहं श्रोतुकामः सभक्तिकम्[2]। एतल्लिङ्गस्य माहात्म्यं तीर्थस्य च विशेषतः ॥६॥
समुद्भूतं कथं[3] लिङ्गमेतत्कुण्डं पुनर्विभो। किं फलं प्राप्यते स्नानात्पूजनात् तद् वदाऽधुना[4] ॥७॥

नेमुनिरुवाच

आसीदाङ्गिरसो दान्तः पूर्वमत्र समाययौ। कुर्वन् तीर्थाटनं नूनं[5] स्नातस्तीर्थेषु सर्वशः ॥८॥
सङ्क्रान्त्यां माघशुक्लायां लिङ्गं तिलमयञ्च सः। संस्कृत्य विधिवद्भक्त्या समानर्च[6] बृहस्पतिः ॥९॥
मनोवतीजलेनेशं वागीश्वरत्वप्राप्तये[7]। अपूपुजन्मुदा भक्त्या गन्धपुष्पोपहारकैः ॥१०॥
तज्जलस्पर्शनादेव चाऽभूल्लिङ्गं शिलामयम्। तिलराशिकृतञ्चाऽपि सिद्धरससमागमात् ॥११॥

---

## अध्याय – १०१

मनःश्री(मनोहरा)तीर्थ र गुप्तेश्वर शिवलिङ्गको महिमा

कार्तिक स्वामीले भन्नुभयो- हे अगस्त्य मुनि मानिस सिद्धतीर्थमा स्नान गरेर गुप्तेश्वरको दर्शन गरेपछि पूर्वजन्ममा गरेका पापबाट मुक्त र ज्ञानी हुन्छ। त्यसपछि विरूपाक्ष जहाँ तिलेश्वर भगवान् बस्नुहुन्थ्यो, त्यस मुकुन्द पर्वतको फेदीमा नेमुनिलाई साथमा लिएर गए। विरूपाक्षले मनश्री महातीर्थमा भक्तिपूर्वक स्नान गरे र प्रसन्न भएर पञ्चोपचार विधिले तिलेश्वर महादेवको पूजा गरे। हे अगस्त्य मुनि ! माघकृष्ण एकादशीको दिन शिवजीप्रति ठूलो भक्ति राखेर राति उनले शिवमन्त्र जप गरे। एक रात त्यहाँ बसेर शिवजीको नाम जप्दै यिनले तीर्थ र लिङ्गको माहात्म्यको बारेमा नेमुनिसित सोधे ॥१-५॥

विरूपाक्षले भने – हे सर्वज्ञ मुनिश्रेष्ठ ! हे प्रभु ! यो लिङ्ग र विशेष गरी तीर्थको माहात्म्य हजुरबाट म सुन्न चाहन्छु। कसरी यो लिङ्ग र तीर्थकुण्डको प्रादुर्भाव भयो ? स्नान र पूजा गर्नाले कुन फल प्राप्त हुन्छ ? त्यो कुरा मलाई बताउनुहोस् ॥६-७॥

नेमुनिले भन्नुभयो- अघि अङ्गिराका छोरा बृहस्पति तीर्थयात्राका क्रममा सबै तीर्थमा स्नान गरेर यहाँ आइपुगेका थिए। माघशुक्ल सङ्क्रान्तिका दिन बृहस्पतिले तिलैतिलले बनेको लिङ्गलाई संस्कार गरेर सभक्ति विधिपूर्वक पूजा गरे। विद्यारूपी सम्पत्तिको प्राप्तिका निमित्त बृहस्पतिले मणिमतीको जलले स्नान गराएर चन्दन, फूल आदि सामग्रीहरूले भगवान् शङ्करको पूजा गरे। सिद्धरस मिसिएको त्यस नदीको जलको स्पर्शले गर्दा तिलको थुप्रो लगाएर बनाएको त्यो लिङ्ग शिलाको लिङ्ग बन्न पुग्यो ॥८-११॥

---

१. पूर्वजन्मकृतं यत्तज्ज्ञानवान्मुक्तसंशयः, इति न.सं.पु.पाठः।
२. सर्वज्ञ ! श्रोतुकामस्त्वयि प्रभो, इति न.सं.पु.पाठः।
३. कथं समुद्भवम्, इति न.सं.पु.पाठः।
४. स्नानात्पूजनात्तद्वदस्व मे, इति न.सं.पु.पाठः।
५. चार्चति स्म, इति न.सं.पु.पाठः।
६. तीर्थयात्रां भ्रमन्नूनम्, इति न.सं.पु.पाठः।
७. वाग्विभवाय निश्चितः, इति न.सं.पु.पाठः।

मुमुदे स ततस्तीव्रं[८] लिङ्गं प्रेक्ष्य शिलामयम्। तिलकेशं महालिङ्गं सर्वयज्ञफलप्रदम् ॥१२॥
रूपं तस्य प्रवक्ष्यामि महापातकनाशनम्। एकवक्त्रं त्रिनेत्रञ्च कृत्तिवासश्चतुर्भुजम् ॥१३॥
नागयज्ञोपवीताङ्गं सर्वाभरणभूषितम्। व्योमप्रभं महाभीष्मं मुण्डमालागलावृतम् ॥१४॥
कपालं त्रिशिखं शक्तिं दधानं डमरुं भुजैः। महामङ्गलरूपेशं दक्षिणामूर्त्तिसंयुतम् ॥१५॥
त्रिनेत्रां द्विभुजां श्यामां मस्तके मुण्डधारिणीम्[९]। कालेश्वरीं महानीलां सर्वाभरणशोभनाम् ॥१६॥
शवश्रवणशस्ताङ्गां देवञ्च[१०] शक्तिसंयुतम्। जजाप तन्मनुं तीव्रं भावेनाऽहर्निशं तदा ॥१७॥
तृतीये दिवसे रुद्रो लिङ्गादाविर्बभूव हि। व्याचष्ट वरदानाय तं भक्तप्रवरं[११] विभुः ॥१८॥

तिलेश्वर उवाच

सन्तुष्टस्तपसा तेऽहं भक्त्या च जीव ! साम्प्रतम्। यद्विद्यते च ते कामो हृदि जानामि तद् ध्रुवम् ॥१९॥
त्वमत्र श्रद्धया वत्स ! समावाहय भारतीम्। आगमिष्यति सा नूनं स्थातुं कण्ठे तवाधुना ॥२०॥
त्यक्त्वा च भार्गवं सा वै त्रिविष्टपाच्च सत्त्वरम्। त्वयाऽऽहूता समायाति चाऽवश्यं बृहतां पते ॥२१॥
भविता सा द्रवीभूता किञ्चिद्धेतोस्ततश्च ताम्। पास्यसि करपुटेन वाक्पतिस्त्वं भविष्यसि ॥२२॥
भार्गवोऽपि पुनर्जीव ! तव शापेन वै तदा। प्राप्स्यति[१२] स द्रवत्वञ्च विमुक्तो मत्प्रसादतः ॥२३॥

नेमुनिरुवाच

इत्युपदिश्य रुद्रोऽयं जीवाय सत्वरं तदा। एतल्लिङ्गे तिरोधानं गतवान् दर्शयंश्च तम् ॥२४॥
ततश्चाऽऽवाहयज्जीवो भारतीमत्र सत्वरम्। स्नात्वा चैव मनोवत्यां श्रद्धया विधिवत्तदा ॥२५॥

---

सम्पूर्ण यज्ञको फल दिने तिलकेश्वर महादेवको लिङ्ग शिलामय भएको देखेर उनी अत्यन्त प्रसन्न भए। महापापलाई नाश गर्ने ती महादेवको स्वरूप म बताउँछु – उहाँका तीन आँखा थिए, एउटा मुख थियो, छालाको लुगा लगाउनु भएको थियो, चार हात थिए, नागको जनै शरीरमा लगाउनु भएको थियो, सम्पूर्ण गहनाले अलङ्कृत हुनुहुन्थ्यो, आकाशको जस्तो कान्ति थियो, अत्यन्त डरलाग्दो हुनुहुन्थ्यो, मुण्डमाला गलामा बेरिएको थियो, खप्पर त्रिशूल शक्ति र डमरु हातमा लिनुभएको थियो, अत्यन्त कल्याणमय उहाँको मूर्ति थियो, उहाँ दक्षिणामूर्तिसहित विराजमान हुनुभएको थियो ॥१३-१५॥

तीन आँखा र दुई हात भएकी, कपालमा झाँक्रो पालेकी, मुण्डमाला लगाएकी, सबै गहनाले सजिएकी, अत्यन्त कालो वर्णकी, काँधमा मुर्दा बोकेकी देवीले युक्त भएका महादेवको ध्यान गरी बृहस्पतिले त्यसबेला शिवजीको मन्त्र रातिदन खूबसित जप गरे। तेस्रो दिन भगवान् शङ्कर लिङ्गबाट प्रकट हुनुभयो र आफ्ना भक्त बृहस्पतिलाई वर दिनका निमित्त भन्न लाग्नुभयो ॥१६-१८॥

तिलेश्वरले भन्नुभयो – हे बृहस्पति ! तिम्रो तपस्या र भक्तिले म अहिले सन्तुष्ट भएँ, तिम्रो हृदयमा जस्तो इच्छा छ, त्यो मैले अवश्य जानेको छु। हे बाबु ! तिमी श्रद्धाका साथ भगवती सरस्वतीको आवाहन गर। निश्चय नै उनी तिम्रो कण्ठमा वास गर्न आउनेछिन्। हे बाबु ! तिमीले बोलाइसकेपछि सरस्वती शुक्राचार्यलाई छोडेर स्वर्गबाट तुरुन्त आउँनेछिन्। कुनै कारणबाट सरस्वती जलरूपा भएर पग्लिनेछिन्। त्यसपछि तिनलाई तिमीले अँजुलीले पिउनू अनि तिमी वाक्पति हुनेछौ। हे बृहस्पति ! शुक्राचार्य पनि त्यसबेला तिम्रो सरापले गर्दा तरल पदार्थ अर्थात् वीर्य वा शुक्र बन्नेछन् र मेरो कृपाबाट मुक्त हुनेछन् ॥१९-२३॥

नेमुनिले भन्नुभयो – भगवाने शङ्कर पनि यसरी बृहस्पतिलाई उपदेश दिएर आफ्नो स्वरूप उनलाई देखाउँदै यसै लिङ्गमा अन्तर्ध्यान हुनुभयो। त्यसपछि बृहस्पतिले मणिमतीमा स्नान गरेर सरस्वतीलाई विधिपूर्णक श्रद्धाले तुरुन्त आवाहन गरे ॥२४-२५॥

---

८. ततो मुमोद तीव्रोऽसौ, इति न.सं.पु.पाठः।
९. कृत्तमस्तकाम्, इति न.सं.पु.पाठः।
१०. देवेशम्, इति न.सं.पु.पाठः।
११. तस्मै स्वभक्तिने, इति न.सं.पु.पाठः।
१२. भविष्यति, इति न.सं.पु.पाठः॥

ततो वै भारती स्वर्गादत्राऽऽययौ मुदाऽन्विता। त्यक्त्वा च भार्गवं शीघ्रं स्थातुं तत्कण्ठदेशके ॥२६॥
अत्राऽऽगतायां भारत्यां सन्त्यज्य तं द्विजोत्तमम्। क्रोधेन मूर्च्छितः स्वर्गे भार्गवो दैत्यसद्गुरुः ॥२७॥
अवतरन्नसौ स्वर्गाद् व्योमस्थो भार्गवस्तदा। व्याजहार वचस्तस्यै शापं दातुञ्च सत्त्वरम् ॥२८॥

भार्गव उवाच

त्यक्त्वा मां त्वं कथं यासि भारति ! चाऽत्र साम्प्रतम्। स्थिरा चेत्यभिधानं ते कथं भवसि चञ्चला ॥२९॥
यस्मादिहागता ब्राह्मी जीवान्तिकं त्रिविष्टपात्। द्रवीभव त्वमद्यादि नदीरूपेण संवह[१३] ॥३०॥

नेमुनिरुवाच

क्रोधेन मूर्च्छिता भूयो भारती सा तदा द्विज। व्याचष्ट वचनं तस्मै शापं दातुं विरूपदृक् ॥३१॥

भारत्युवाच

रे रे भार्गव मां यस्माच्छपसि ह्यविवेकतः। तस्मात्त्वमपि चाऽत्रैव द्रवो भवतु साम्प्रतम् ॥३२॥

नेमुनिरुवाच

दत्त्वा शापं ततो ब्राह्मी द्रवरूपाऽभवत्तदा। कुण्डात्प्रतिसृताश्चाऽऽपस्तज्जा सरिदुवाह[१४] सा ॥३३॥
सोऽपि तदाऽभवद् विप्र ! द्रवरूपो हि भार्गवः। ततः कुण्डादुवाहाऽऽशु नदरूपो विरूपदृक् ॥३४॥
सस्मार भार्गवो रुद्रं तच्छापहरणाय च[१५]। कम्पिताङ्गो विरूपाक्ष ! तत्क्षणाद् भक्तितः पुनः ॥३५॥
एकांशञ्च परित्यज्य ययौ स्वर्गं द्रुतं पुनः। महादेवप्रसादात्स भक्त्या स्मृत्या च शूलिनः[१६] ॥३६॥
ततो बृहस्पतिर्दीनः समालोक्य च तां तदा। बभूव दुःखदग्धोऽसौ द्रवीभूतां विरूपदृक् ॥३७॥
तुष्टाव तां मुहुर्जीवस्त्रिविधैर्नतकन्धरः। प्रणम्य शिरसाष्टाङ्गैः परिक्रमन्पुनः पुनः ॥३८॥

---

अनि सरस्वती शुक्राचार्यलाई छोडेर बृहस्पतिको घाँटीमा बस्नका निमित्त प्रसन्न हुँदै स्वर्गबाट यहाँ आइन्। सरस्वती ब्राह्मणश्रेष्ठ शुक्राचार्यलाई छोडेर यहाँ आएपछि दैत्यका प्राण बनेका शुक्राचार्य क्रोधले मूर्च्छित भए। स्वर्गबाट उत्रन लागेका शुक्राचार्यले आकाशबाटै सरस्वतीलाई सराप दिनका लागि भन्न थाले ॥२७–२८॥

शुक्राचार्यले भने – हे सरस्वती ! तिमी मलाई छोडेर अहिले कसरी जाँदैछौ ? तिम्रो नाम स्थिरा हो, तिमी कसरी चञ्चला बन्न पुग्यौ ? हे सरस्वती ! जुन कारणले तिमी स्वर्गबाट झरेर बृहस्पतिको नजिकै गयौ, त्यसैकारणले गर्दा तिमी तरल बनी आजदेखि नदी भएर बग्नेछौ ॥२९–३०॥

नेमुनिले भन्नुभयो – हे विरूपाक्ष ! सराप सुनेपछि सरस्वती रिसले भुतुक्क भइन् र शुक्राचार्यलाई सराप दिनका लागि भन्न थालिन् ॥३१॥

सरस्वतीले भनिन्– हे शुक्राचार्य ! विचारै नगरीकन तिमीले मलाई सराप दियौ, त्यसैले तिमी पनि अहिले नै तरल पदार्थ शुक्र बन ॥३२॥

नेमुनिले भन्नुभयो – यसरी सराप दिएर सरस्वती तरल पदार्थ अर्थात् जलरूपा बन्न पुगिन्। कुण्डबाट स्वच्छ जल निस्कियो। उनी नदीको रूपमा बगिन् ॥३३॥

हे विरूपाक्ष ! त्यसपछि शुक्राचार्य पनि तरल भए र तुरुन्तै नदको रूप लिएर कुण्डबाट बगे। अनि शुक्राचार्यले त्यो सराप हटाउनका लागि शरीर कँपाएर तुरुन्तै भक्तिपूर्वक रुद्रको स्मरण गरे। भगवान् शङ्करलाई भक्तिपूर्वक सम्झिएको हुनाले उहाँको कृपाले गर्दा एक अंश त्यहाँ छोडेर शुक्राचार्य तुरुन्तै स्वर्ग गए। हे विरूपाक्ष ! त्यसपछि सरस्वतीलाई तरल बनेको देखेर बृहस्पति अत्यन्त दुःखित भए। बृहस्पतिले काँध झुकाएर तीन किसिमका भक्तिद्वारा सरस्वतीलाई प्रसन्न तुल्याए, आठै अङ्ग र शिरले प्रणाम गरे, बारम्बार परिक्रमा गरे ॥३४–३८॥

---

१३. नदीभूत्वा प्रवाहय, इति न.सं.पु.पाठः।
१४. स्वच्छा नदी उवाह, इति न.सं.पु.पाठः।
१५. तच्छापापनयनाय च, इति न.सं.पु.पाठः।
१६. च शूलिनः स्मृतात्, इति न.सं.पु.पाठः।

बृहस्पतिरुवाच

ॐ नमो जलरूपिण्यै सरस्वत्यै नमो नमः। द्रवीभूते नमो ब्राह्म्यै भारत्यै वाक्प्रदे नमः ॥३९॥
देहि मे देहि वाग्भूतिं कण्ठमध्ये स्थिता भव। अद्यादि त्वत्प्रसादाद्वै भविताऽस्मि च गीष्पतिः ॥४०॥

नेमुनिरुवाच

तां प्रेक्ष्य दुःखितो जीवो गत्वा तदन्तिकं ततः। दक्षहस्तपुटेनाऽऽशु पपौ स तज्जलं सकृत् ॥४१॥
तज्जलपानमात्रेण कविर्जातो बृहस्पतिः[१७]। पूर्वाभ्यस्तवचोराशेः स्मर्ता शास्त्रनिधिर्बभौ[१८] ॥४२॥
भार्गवाय पुनः शापं ददौ तथा बृहस्पतिः। अम्बरस्थं समालोक्य कविं क्रोधेन संयुतम् ॥४३॥
रे भागर्व ! यतो ब्राह्मी द्रवीकृता ममाग्रतः। शुक्रो भव त्वमद्याऽऽशु गर्भवासं पुनर्विशन् ॥४४॥
तच्छापेन हराङ्गात्स समुत्पन्नः पुनर्द्विजः[१९]। ततः शुक्र इति ख्यातश्चाऽद्यापि दैत्यपूजितः ॥४५॥
तत्र स्नात्वा पुनर्जीवः सम्पूज्य च तमीश्वरम्। न्यवेदयच्च[२०] तद्वार्त्तामीश्वराय तदग्रतः ॥४६॥
व्याजहार ततस्तस्मै तद्धेतुज्ञस्तिलेश्वरः। शापस्यान्तं सरस्वत्याः शृणु वच्मि बृहस्पते ॥४७॥
एकसंवत्सरं दिव्यं द्रवीभूता प्रतिष्ठति। एकांशमत्र संस्थाय भविता सा हरिप्रिया ॥४८॥
सङ्गमे सा मनोवत्या प्रकृत्यङ्गवती यतः। ततो विष्णुप्रिया नित्यं भविष्यति न संशयः ॥४९॥
गच्छ यदृच्छया स्वर्गं देवान्तत्र प्रपालय। वाक्पतिं त्वां गुरुं देवाः पूजयिष्यन्ति ते सदा[२१] ॥५०॥

---

बृहस्पतिले भने - जलको रूप लिनेलाई नमस्कार छ, सरस्वतीलाई बारम्बार नमस्कार छ। तरल पदार्थ बन्ने हे देवी ! हजुरलाई नमस्कार छ, ब्राह्मीलाई नमस्कार छ, भारतीलाई नमस्कार छ। विद्या दिने हे देवी ! हजुरलाई नमस्कार छ। मलाई वाणीरूपी ऐश्वर्य दिनुहोस्, मेरो कण्ठमा आजदेखि तपाईं स्थिर भएर रहनुहोस्, म हजुरको कृपाले वाणीको अधिपति बन्न पाउँनेछु ॥३९-४०॥

नेमुनिले भन्नुभयो- जलरूपा सरस्वतीलाई देखेर दुःखित हुँदै बृहस्पति उनको नजिकै गए र दायाँ हातको खोंचोले सरस्वती नदीको जल एकपटक पिए। त्यो नदीको जल पिउने बित्तिकै बृहस्पति राम्रा कवि भए, सम्पूर्ण शास्त्ररूपी निधिका ज्ञाता बने, अघि जस्तै भए। फेरि बृहस्पतिले आकाशमा रहेका रिसाहा शुक्राचार्यलाई देखेर उनलाई सराप दिए। हे शुक्राचार्य ! मेरा अगाडि नै सरस्वतीलाई जलरूपा बनायौ, त्यसैले तिमीलाई आजदेखि गर्भमा बास गर्नुपरोस्, वीर्य बन्नुपरोस्। त्यसै सरापले गर्दा महादेवको अङ्गबाट फेरि शुक्राचार्यले जन्मनु पऱ्यो। त्यसैले दैत्यद्वारा पूजित उनलाई शुक्र भनियो ॥४१-४५॥

बृहस्पतिले फेरि स्नान गरेर भगवान् शङ्करको पूजा गरे र सरस्वती जल भएको कथा उहाँको अगाडि शिवजीलाई निवेदन गरे। त्यो सबै कुरा बुझेका तिलेश्वर भगवान्ले बृहस्पतिसँग भन्नुभयो- हे बृहस्पति ! सरस्वतीको सराप कसरी अन्त्य हुन्छ सुन, म बताउँछु। दिव्य एक वर्षसम्म तरल पदार्थ भएर सरस्वती यसै ठाउँमा बस्छिन्। त्यसपछि उनको एक अंशमात्र यहाँ रहनेछ, अरू अंशले युक्त भएकी सरस्वती विष्णुकी प्रियतमा भएर रहनेछिन् ॥४६-४८॥

उनी मनोवती नदीको सङ्गममा स्वभावले मात्र एक अङ्ग भएर बस्नेछिन्। त्यसपछि तिनी सधैँ विष्णुकी प्रियतमा बन्नेछिन्, यसमा शङ्का छैन। आफ्नो इच्छा अनुसार स्वर्गमा जाऊ, त्यहाँ देवताहरूलाई राम्रोसित पालना गर, ती देवताहरूले तिमीलाई वचनहरूका स्वामी अर्थात् गुरु भनेर सधैँ पूजा गर्नेछन् ॥४९-५०॥

---

१७. जीवोऽसौ सुकविरभूत्, इति न.सं.पु.पाठः।
१८. सर्वशास्त्रनिधोर्विज्ञो यत्तदभ्यसितं पुरा, इति न.सं.पु.पाठः।
१९. भूयश्च संभवो द्विज, इति न.सं.पु.पाठः।
२०. निवेदति स्म, इति न.सं.पु.पाठः।
२१. प्रोक्त्वा पूजिष्यन्ति सदा हि ते, इति न.सं.पु.पाठः।

नेमुनिरुवाच

ततः स्वर्गं गतेऽस्मिन् वै चैकाब्दे च गते हि सा[२२]। सङ्गमे तु मनोवत्या प्रकृत्याऽभूत्सरस्वती ॥५१॥
द्विज ! तीर्थमिदं तस्मात् मनःश्रीरिति विश्रुतम्[२३]। सङ्गमे च मनोवत्या सर्वतीर्थोत्तमोत्तमम् ॥५२॥
तस्मात्सरस्वतीकुण्डात्पञ्चचापसमुत्तरे। मनःश्रीश्च महातीर्थं तत्राऽऽस्ते च विरूपदृक् ॥५३॥
एतत्कुण्डे पयःपानात्सर्वपापैर्विवर्जितः। बृहस्पतिसमो भूत्वा लोकैः सम्पूज्यते जनः ॥५४॥
तस्याञ्च स्नानमात्रेण लभेत मनःकामनाम्[२४]। मनसा यत्कृतं पापं विलीनमखिलं[२५] भवेत् ॥५५॥
मनसा चाऽर्जिता पूर्वं लिङ्गार्चनाय सा नदी। गुरुणा च[२६] समाराध्य तस्मान्मनोवती श्रुता ॥५६॥
सरस्वती महापुण्या मनोवती तथापरा। तयोश्च सङ्गमे तीर्थं मनःश्रीरिति विश्रुतम् ॥५७॥
रुद्रेणावाहिता गङ्गा कुण्डाद्विनिःसृता पुरा। रुद्रकुण्डमिति ख्यातं[२७] तस्माद्रुद्रान्तिके विदुः ॥५८॥
दशगङ्गासमा ज्ञेया तत्र स्नानात्फलं भवेत्[२८]। सौभाग्यमबला सद्यो रूपसौन्दर्यमाप्नुयात् ॥५९॥
अस्मिंश्च स्नानमात्रेण नरो भक्त्या विरूपदृक्। मनःश्रियं सुसम्पत्तिं यदीप्सितञ्च प्राप्नुयात्[२९] ॥६०॥
अस्मिन् तीर्थे बुधः स्नात्वा चैतल्लिङ्गं समर्हति। जन्मार्जितैनसा मुक्तो हरलोकं स गच्छति ॥६१॥
वाराणस्यां कृतं यावत् पुण्यं पापञ्च मानवैः[३०]। तावद्दशगुणञ्चाऽत्र पुण्यापुण्यञ्च लभ्यते[३१] ॥६२॥
द्वापरान्ते[३२] कलौ प्राप्ते चेहाऽऽगत्य दिशि क्षितौ। देवर्षयश्च तीर्थानि तस्थुरत्र सुगौरवात् ॥६३॥
तदारभ्याद्यपर्यन्तं क्षेत्रमेतत् महत्तमम्[३३]। शृणु चाऽत्र प्रवक्ष्यामि कश्चिन्मुक्तो वनेचरः ॥६४॥

---

नेमुनिले भन्नुभयो– त्यसपछि बृहस्पति स्वर्गमा गए। एक वर्ष बितेपछि ती सरस्वती मनोवतीको सङ्गममा स्वभावले उनकै अङ्ग भएर बसिन्। हे विरूपाक्ष ! त्यसै समयदेखि मनोवतीको सङ्गममा रहेको सबै तीर्थभन्दा पनि उत्तम यो तीर्थ मनःश्रीतीर्थ भनेर प्रसिद्ध भएको छ ॥५१–५२॥

हे विरूपाक्ष ! त्यस सरस्वतीकुण्डबाट बीस हात उत्तरतिर मनःश्री नाम गरेको ठूलो तीर्थ छ। जसले यस कुण्डमा गएर पानी पिउँछ, त्यो व्यक्ति सम्पूर्ण पापबाट मुक्त हुन्छ, जनताबाट बृहस्पतिजस्तै ऊ सम्मानित हुन्छ। त्यहाँ स्नान गर्नाले मात्रै पनि इच्छा लागेको कामना अवश्य पूर्ण हुन्छ, मनले चिताएको सबै पाप नाश भएर जान्छ। अघि शिवजीको लिङ्गको पूजा गर्नका लागि बृहस्पतिले मनमनै आराधना गरेर तिनलाई उत्पन्न गराएका थिए। त्यसैले तिमी मनोवती नामले प्रसिद्ध भइन्। अत्यन्त पवित्र सरस्वती नदी र अर्को मनोवती नाम गरेकी नदीको सङ्गममा रहेको तीर्थ मनश्री नामले प्रसिद्ध छ। अघि गङ्गालाई शिवजीले आवाहन गर्नुभएको थियो। त्यसपछि उनी तिलेश्वर महादेवको नजिकै रहेको कुण्डबाट निस्केकी थिइन्। त्यसैले त्यो कुण्ड रुद्रकुण्ड नामले प्रसिद्ध भयो। त्यहाँ स्नान गर्नाले दशवटा गङ्गामा स्नान गरे बराबरको फल प्राप्त हुन्छ। नारीले स्नान गर्दछिन् भने सौभाग्य, रूप र सौन्दर्य प्राप्त गर्दछिन्। हे विरूपाक्ष ! जसले यस कुण्डमा भक्तिपूर्वक स्नान गर्दछ, त्यसले मनले चिताएको ऐश्वर्य, राम्रो सम्पत्ति जे चाहेको छ, त्यो अवश्य पाउँछ ॥५३–६०॥

जुन विद्वान्ले यस तीर्थमा स्नान गरेर यस लिङ्गको पूजा गर्छ त्यो व्यक्ति जन्मभरि गरेका पापबाट मुक्त भएर शिवलोक जान्छ। काशीमा स्नान गर्दा लाग्ने जति पनि पाप तथा धर्महरू छन्, त्यसको दश गुणा बढी पाप र धर्म मानिसले यहाँ पाउँछ। त्रेतायुगको केही समय बाँकी रहेको बेलादेखि कलियुगको प्रारम्भसम्म पृथ्वीको यस दिशामा देवता, ऋषि र तीर्थहरू आएर बडो गौरवका साथ बसेका थिए। यो क्षेत्र त्यसै समयदेखि अहिलेसम्म अत्यन्त गौरवशाली बनेको छ। यहाँ आएर कुनै वनडुलुवा आदिवासी मुक्त भएको छ, त्यो कुरा बताउँछु, सुन ॥६१–६४॥

---

२२. ततः स्वर्गं गतेऽसौ चैकाब्दञ्च गते हि सा, इति न.सं.पु.पाठः।
२३. तदादि द्विज ! तीर्थोऽयं मनःश्रीरिति विश्रुतः, इति न.सं.पु.पाठः।
२४. मनःकामं लभेद् ध्रुवम्, इति न.सं.पु.पाठः।
२५. तत्सर्वं विलयम्, इति न.सं.पु.पाठः।
२६. बृहस्पतिः, इति न.सं.पु.पाठः।
२७. रुद्रकुण्ड इति ख्यातः, इति न.सं.पु.पाठः।
२८. लभेत्, इति न.सं.पु.पाठः।
२९. लभेत् ध्रुवम्, इति न.सं.पु.पाठः।
३०. यावत्सन्ति पापेतराणि च, इति न.सं.पु.पाठः।
३१. कृत्याकृत्यं लभेन्नरः, इति न.सं.पु.पाठः।
३२. त्रेताशेषे, इति न.सं.पु.पाठः।
३३. एतत्क्षेत्रं गरिष्ठोऽभूत्तस्मात्प्रभृतिरद्यतः, इति न.सं.पु.पाठः।

आसीन्म्लेच्छः पुरा विप्र ! उलूको नाम विश्रुतः । प्राग्जन्ममातृदोषेण गृद्धाननो बभूव सः ॥६५॥
फलमूलाशनायार्य भ्रामं भ्रामं तदीप्सया[३४] । अत्रैव प्राप्तवान्म्लेच्छः सङ्क्रान्त्यां मकरस्य च ॥६६॥
ऋषिभिः पूजितं लिङ्गं प्रेक्ष्य म्लेच्छः प्रहर्षितः । संसस्नौ रुद्रकुण्डे सः तत्सङ्क्रान्त्यां विरूपदृक् ॥६७॥
आदाय तज्जलं म्लेच्छश्चाऽर्चीतिस्म महेश्वरम् । फलपुष्पोपहारैश्च दीपं दत्त्वा च जागृतः ॥६८॥
विद्यमाने प्रदीपे च प्रोक्ते शिवशिवेति च । विनिद्रे सति तं द्रष्टुं[३५] शिवदूताः समाययुः ॥६९॥
तद्याने तं समास्थाय निन्युः शिवपुरं महत् । लिङ्गसंस्पर्शनात्पुण्यात्तत्स्नानादीशपूजनात् ॥७०॥
नीयमाने तदा म्लेच्छे गगनेऽद्भुतयानगे[३६] । प्रोचुर्मुनिगणास्तस्मै साधु साध्विति सादरम् ॥७१॥
भूयो गच्छ विरूपाक्ष ! यत्राऽसौ चम्पकेश्वरः । धनुषां द्विशते दूरे पश्चिमायामितो दिशि[३७] ॥७२॥
तस्मिन्तीर्थे पुनः स्नात्वा चम्पकेशं प्रपूजय । यावत्पुराकृतं पापं तत्सर्वं नश्यति ध्रुवम् ॥७३॥

विप्रेश ! भूयाः किल सावधानः, श्रुत्वा मदीयं वचनं त्वमस्मात् ।
खण्डादधः सानुतले हि गच्छ, विराजते यत्र स चम्पकेशः ॥७४॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां मनःश्रीतीर्थतिलेश्वरयोर्माहात्म्यं नाम एकोत्तरशततमोऽध्यायः ॥१०१॥

---

हे ब्राह्मण विरूपाक्ष ! अघि उलूक नाम गरेको म्लेच्छ थियो । पूर्व जन्ममा आमामाथि गरेको अपराधले गर्दा त्यो गिद्धको जस्तो मुख लिएर जन्मियो । मकर सङ्क्रान्तिका दिन फल तथा कन्दमूलको खोजी गर्दै त्यो म्लेच्छ यसै ठाउँमा आइपुग्यो । हे विरूपाक्ष ! ऋषिहरूले लिङ्गलाई पूजा गरेको देखेर ऊ अत्यन्त प्रसन्न भयो । मकरसङ्क्रान्तिका दिन उसले रुद्रकुण्डमा स्नान गऱ्यो ॥६५-६७॥

त्यस कुण्डको जल र फलफूल तथा पूजा सामग्री लिएर त्यस म्लेच्छले बत्ती बाल्दै जाग्राम बसेर शिवजीको पूजा गऱ्यो । बत्ती बलिरहेको थियो, शिव-शिव भनेर त्यो म्लेच्छ जागा अवस्थामा रहेको थियो । त्यसैबेला शिवजीका दूतहरू त्यहाँ आइपुगे । लिङ्गको स्पर्श गरेको पुण्य, त्यहाँ गरेको स्नान र शिवजीको पूजाले गर्दा उनीहरूले त्यस म्लेच्छलाई त्यसै यानमा राखेर उत्तम शिवजीको लोकमा लगे ॥६८-७०॥

म्लेच्छलाई अद्‌भुत यानमा राखेर आकाशतिर लगेपछि मुनिहरूले त्यसलाई साधु साधु भनेर धन्यवाद दिए । हे विरूपाक्ष ! अब तिमी यहाँबाट पश्चिमतिर आठ सय हात पर जाऊ, जहाँ चम्पकेश्वर महादेव बस्नुभएको छ । त्यस तीर्थमा स्नान गरेर चम्पकेश्वर महादेवको पूजा गर, तिमीले अघि गरेका सम्पूर्ण पापहरू अवश्य नाश हुनेछन् ॥७१-७३॥

हे ब्राह्मण ! मेरो भनाइ सुनेर सावधान भई तिमी पर्वतखण्डको फेदीतिर मसँगै हिँड । त्यहाँ चम्पकेश्वर महादेव विराजमान हुनुभएको छ ॥७४॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा मनःश्रीतीर्थ र तिलेश्वरको माहात्म्यनामक एकसय एकौं अध्याय पूरा भयो ।

---

३४. चान्वेषितुं तदिप्सया, इति न.सं.पु.पाठः ।
३५. चात्र संस्थानम्, इति न.सं.पु.पाठः ।
३६. म्लेच्छ अम्बरेऽद्भुतयानगे, इति न.सं.पु.पाठः ।
३७. चातो दिशि च वारुणे, इति न.सं.पु.पाठः ।

# द्व्युत्तरशततमोऽध्यायः

## सरस्वतीकुण्डतीर्थ–चम्पकेश्वरशिवलिङ्गयोर्महिमा

अगस्त्य उवाच

ततः सरस्वतीकुण्डे पीत्वा जलं विरूपदृक्। वाक्सिद्धश्चाभवद् भूयो[1] लिङ्गार्चनाद्विकिल्विषः ॥१॥
आकर्ण्य नेमुनेर्वाचं तन्माहात्म्यप्रसूचकम्। प्रहर्षितो विरूपाक्षः सत्कथामिव सज्जनः ॥२॥
नेमुनिना मुने ! सार्द्धं ययौ यत्र स्थितो हरः। धनुषां द्विशते दूरे वारुण्यां दिशि भावतः[2] ॥३॥
सरस्वत्यां मुदा स्नात्वा चम्पकेशमपूपुजत्। द्वादश्यां माघकृष्णस्य भक्तिभावेन वै द्विजः ॥४॥
जागृतवान्निशायां स दीपं दत्त्वा विरूपदृक्। ततोऽपृच्छच्च माहात्म्यं मुनिं लिङ्गसमुद्भवम् ॥५॥

विरूपाक्ष उवाच

समुद्भूतं कथं[3] लिङ्गमेतच्च मुनिसत्तम। श्रोतुमिच्छाम्यहं भूयो वद मे सर्वविद्विभो ॥६॥
माहात्म्यञ्चैव लिङ्गस्य केन प्रकाशितं पुनः। सेवितं केन तत्पूर्वं लब्धञ्च किं फलं मुने ॥७॥

नेमुनिरुवाच

आसीत् कृतयुगे विप्रो मनुर्नाम महातपाः। पूर्वजन्मविपाकेन विद्याहीनोऽभवद् द्विज ॥८॥
प्रतिपदि सकृद्विद्यां भ्रान्त्या पठन् गुरोर्मनुः। जन्मान्तरेऽपि तद्दोषाद्विद्यां विस्मृतवान् पठन् ॥९॥
बृहस्पतिमुखाच्छ्रुत्वा चेहैव प्राप्तवान् मुनिः। सारस्वते महाकुण्डे स्नात्वा पपौ जलं मुदा ॥१०॥
पीतमात्रे च तत्तोये ह्यधीतां पूर्वजन्मनि[4]। चतुःषष्टिकलां विद्यामदृष्टां बुबुधेऽपि सः ॥११॥

---

## अध्याय – १०२

### सरस्वतीकुण्डतीर्थ र चम्पकेश्वर शिवलिङ्गको महिमा

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य ! त्यसपछि विरूपाक्षले सरस्वती कुण्डको जलपान गरे। पापबाट मुक्त भई लिङ्गको पूजा गरेकाले उनको वाक्सिद्धि भयो। जसरी सत्कथा सुनेर सज्जन आनन्दित हुन्छन्, त्यसरी नै त्यस कुण्डको माहात्म्य बताउने नेमुनिको वचन सुनेर विरूपाक्ष पनि अत्यन्त प्रसन्न भए। हे अगस्त्य मुनि ! त्यसपछि विरूपाक्ष नेमुनिलाई साथमा लिई आठ सय हात पर पश्चिम दिशामा जहाँ भगवान् शङ्कर बस्नुहुन्थ्यो, त्यसै ठाउँमा गए। ती ब्राह्मणले सरस्वती कुण्डमा स्नान गरेर माघकृष्ण द्वादशीका दिन भक्तिपूर्वक चम्पकेश्वर भगवान्‌को पूजा गरे। विरूपाक्ष प्रसन्न भई बत्ती बालेर राति जाग्राम बसे। त्यस समयमा उनले नेमुनिसित त्यस लिङ्गको उत्पत्तिको कथा र माहात्म्य सोधे ॥१–५॥

विरूपाक्षले भने – हे सर्वज्ञ ऋषिश्रेष्ठ ! यस लिङ्गको उत्पत्ति कसरी भयो ? यस लिङ्गको के महत्त्व छ ? यस लिङ्गलाई कसले प्रकाशित गर्‍यो ? पहिले यसको आराधना कसले गर्‍यो र के फल पायो ? मलाई बताइदिनुहोस् ॥६–७॥

नेमुनिले भन्नुभयो– हे ब्राह्मण ! सत्य युगमा मनुनाम गरेका महातपस्वी ब्राह्मण थिए। पूर्वजन्मको कर्मले गर्दा उनी अज्ञानी भए। ती मनुले प्रतिपदाको दिन भुक्किएर गुरुबाट पढेकाले त्यसै दोषले गर्दा अर्को जन्ममा पढ्न लाग्दा उनले विद्या बिर्सिए ॥८–९॥

बृहस्पतिको निर्देशनअनुसार ती मुनि यसै ठाउँमा आए र प्रसन्नतापूर्वक सरस्वती महाकुण्डमा स्नान गरेर कुण्डको जल पिए। त्यहाँको जल पिउने बित्तिकै पूर्वजन्ममा पढेको तर यस जन्ममा साक्षात्कार नभएको विद्या र चौसट्ठी कलालाई उनले सम्झिए ॥१०–११॥

---

१. वाक्सिद्धिरभवद्, इति न.सं.पु.पाठः।
२. द्विशते सत्यसौ दूरे धनुषां दिशि पश्चिमे, इति न.सं.पु.पाठः।
३. कथं समुद्भवम्, इति न.सं.पु.पाठः।
४. पीतमात्रेण तोयं तदधीतां पूर्वजन्मनि, इति न.सं.पु.पाठः।

ततश्चाऽनर्च तल्लिङ्गं तिलेश्वरं स चाऽर्हणैः। अप्रार्थयद्वरं भक्त्या स्वात्मोद्धरणहेतुकम् ॥१२॥
व्याजहार तदा तस्मै तिलेश्वरो विरूपदृक्। भक्तिज्ञानार्चनैस्तुष्टः प्रकाशविग्रहौजसा ॥१३॥

तिलेश्वर उवाच

भो मनोऽतो हि वारुण्यां दिशि सरस्वतीतटे। तत्राराधय मां भक्त्या ततो मोक्षं प्रयास्यसि ॥१४॥

नेमुनिरुवाच

इत्युक्त्वान्तर्हिते लिङ्गे व्यक्तरूपे तदा पुनः। ततः समाययौ चात्र मनुर्मुदा विरूपदृक् ॥१५॥
सरस्वत्यां पुनः स्नात्वा तस्थौ चम्पकवृक्षकम्। तच्चम्पकोपहारैश्च भक्त्या स्वाराधयद् ध्रुवम् ॥१६॥
एकञ्च वत्सरं दिव्यं समाराधितवान् विभुम्। चाम्पकैः कुसुमैर्नित्यं धिया पठन् हि तन्मनुम् ॥१७॥
वैशाखे पूर्णिमायाञ्च चम्पकपुष्पसञ्चयात्। एतल्लिङ्गं समुद्भूतं तत्पूजान्तेऽपराह्णके ॥१८॥
ददर्श पुरतो लिङ्गमुपचम्पकवृक्षकम्। अर्चति स्म मनुर्भक्त्या चम्पकैस्तं स्तवैर्मुदा ॥१९॥
तुष्टाव च मनुर्लिङ्गं परिक्रम्य पुनः पुनः। प्रणनाम तदाष्टाङ्गैस्त्रिविधोक्तैर्विरूपदृक् ॥२०॥
आविर्भूतस्तदा लिङ्गात् त्रिनेत्रः शूलधृक् विभुः। व्याजहार शुभं वाक्यं भक्ताय वरमर्पितुम्[५] ॥२१॥

चम्पकेश्वर उवाच

भो मनो मम भक्तस्त्वं वरं दास्यामि ते शृणु। अद्यादि त्वञ्चिरञ्जीव्याः स्वारोचिषो भविष्यसि ॥२२॥
बहुयुगं सुखं भोग्यं भुक्त्वा भोगान् यथेप्सितान्। यस्मात्त्वयार्चितोऽहं वै चम्पकैः कुसुमैः सदा ॥२३॥
वदिष्यन्तीति च मां तस्माल्लौकिकाश्चम्पकेश्वरम्। गच्छ मनोऽधुना स्वर्गं भुङ्क्ष्व तत्र यथेप्सितान् ॥२४॥
देवाश्च त्वां नमस्यन्ति मद्भक्तप्रवरं हृदा[६]।

---

त्यसपछि उनले विभिन्न पूजा सामग्रीद्वारा तिलेश्वर भगवान्को पूजा गरे। आफ्नो उद्धारका लागि उनले भक्तिपूर्वक वर मागे। हे विरूपाक्ष ! भगवान् तिलेश्वरले उनको भक्ति, ज्ञान र आराधनाबाट सन्तुष्ट भएर शरीरको तेज देखाउँदै उनलाई भन्न लाग्नुभयो ॥१२-१३॥

तिलेश्वरले भन्नुभयो – हे मनु ! यस ठाउँबाट पश्चिम दिशामा रहेको सरस्वती नदीको तटमा बसेर भक्तिपूर्वक मेरो आराधना गर, यसबाट तिमीले मोक्ष प्राप्त गर्नेछौ ॥१४॥

नेमुनिले भन्नुभयो – हे विरूपाक्ष ! यति भनेर भगवान्को व्यक्त रूप लिङ्गमा अन्तर्धान भयो। त्यसपछि प्रसन्न हुँदै मनु यस ठाउँमा आए। त्यसपछि उनी सरस्वती नदीमा स्नान गरी चाँपको रुखमुनि गएर बसे। उनले चाँपका फूलहरूद्वारा भक्तिपूर्वक चम्पकेश्वर महादेवको आराधना गरे। दिव्य एक वर्षसम्म नित्य भगवान् शङ्करको मन्त्र जप्दै उनले चाँपका फूलहरू चढाएर महादेवको आराधना गरे ॥१५-१७॥

वैशाख पूर्णिमाको दिन अपराह्नको समयमा पूजा सकिएपछि चाँपका फूलहरूको सञ्चयबाट यस लिङ्गको प्रादुर्भाव भयो। मनुले चाँपको रुखको नजिकै अगाडि लिङ्ग देखे। उनले प्रसन्न भएर चाँपका फूलहरूले त्यस लिङ्गको पूजा गरे र भक्तिपूर्वक स्तुति गरे। हे विरूपाक्ष ! मनुले लिङ्गलाई बारम्बार परिक्रमा गरेर प्रसन्न तुल्याए। अनि तीनै किसिमका भक्तिद्वारा आठै अङ्ग झुकाएर उनले नमस्कार गरे। त्यसपछि त्यस लिङ्गबाट तीन आँखा भएका त्रिशूलधारी भगवान् शङ्कर प्रकट हुनुभयो र आफ्नो भक्तलाई वरदान दिन शुभवाक्य बोल्नुभयो ॥१८-२१॥

चम्पकेश्वरले भन्नुभयो – ममाथि भक्ति राख्ने हे मनु ! तिमीलाई वर दिन्छु सुन– आजदेखि तिमी चिरञ्जीवी भयौ, तिमी स्वारोचिष नाम गरेका मनु हुनेछौ। तिमीले मलाई नित्य चाँपका फूलले पूजा गरेकाले तिमी धेरै समयसम्म इच्छा लागेका सुखभोग गर्न पाउनेछौ। हे मनु ! भक्तहरूले पनि मलाई चम्पकेश्वर भन्नेछन्। अब तिमी स्वर्ग गएर इच्छानुसारको भोग गर। मेरो भक्त तिमीलाई स्वर्गमा देवताहरूले सादर प्रणाम गर्नेछन् ॥२२-२४½॥

---

५. वरदानाय भक्तिने, इति न.सं.पु.पाठः।
६. मद्भक्तिर्न समाद्रयन्, इति न.सं.पु.पाठः।

नेमुनिरुवाच

इत्युक्त्वाऽन्तर्दधे लिङ्गं चाऽञ्जसा शाङ्कर[७] द्विज ॥२५॥

तिरोधानं गते रुद्रे सोऽपि ययौ त्रिविष्टपम्। कश्चित्कालान्तरे म्लेच्छो विशङ्कुर्नाम विश्रुतः ॥२६॥

प्रययौ मृगयारण्यमेकाकी च क्षुधाऽर्दितः। विलङ्घ्य पर्वतान् म्लेच्छस्तथा च बहुकन्दराः ॥२७॥

अत्रैव प्राप्तवान् विप्र क्षुधया पीडितो भृशम्। ददर्श मृगमेकञ्च तत्र चम्पककानने ॥२८॥

चरन्तं शाद्वले नूनं पिबन्तं तज्जलं मुहुः। हन्तुं प्रचक्रमेऽसौ हि विचरन्तं[८] महासुखम् ॥२९॥

सन्धाय तच्छरं ज्यायामुत्ससार शरं दृढम्। तूणोत्पातरवं श्रुत्वा चाऽपश्यच्चकितं दिशि ॥३०॥

बाणो धृतमृगो म्लेच्छं प्राघर्षच्चकितेक्षणम्। क्षिप्रं दुद्राव भीत्याऽसावधश्चम्पकशाखिनः ॥३१॥

एतल्लिङ्गं सुखं स्पृष्ट्वा[९] गुल्माच्छन्नतनुः स्थितः। स चिक्षेप शरं म्लेच्छस्तमुद्दिश्य द्रुतं ततः ॥३२॥

पपौ तद्रुधिरं बाणो भित्त्वाऽङ्गमविशत् क्षितिम्। मृगः[१०] पपात भूमौ स चैतल्लिङ्गसमीपतः ॥३३॥

अवतेरुस्ततो व्योम्नो यानहस्ता हि तद्गणाः। सन्त्यज्य तत्तनुञ्चाऽसौ दिव्याङ्गोऽभून्नरोत्तमः ॥३४॥

याने चाऽऽस्थाय तं दूता निन्युर्व्योम्नो हरालयम्। ततश्च शिवदूतानाञ्चेष्टां यानं मृगस्य च ॥३५॥

स म्लेच्छस्तादृशं रूपं प्रेक्ष्योन्मना बभूव ह[११]। अवधार्य ततश्चेष्टां किमित्यद्याऽद्भुतं भवत् ॥३६॥

स्पृट्ष्वा सरस्वतीतोयं तत्सर्वं ज्ञातवान् हि सः। ज्ञानयुक्तो विरक्तोऽभूद्विशङ्कुस्तं निरीक्ष्य च ॥३७॥

मयाऽद्य किं कृतं कर्म चेति चिन्ताकुलो भृशम्। सन्त्यज्य कार्मुकं तत्र विरक्तोऽभूत् पलायितः[१२] ।३८॥

---

नेमुनिले भन्नुभयो – हे विरूपाक्ष ! यति भनेर भगवान् शङ्कर तुरुन्त लिङ्गमा अन्तर्ध्यान हुनुभयो। शङ्कर अन्तर्ध्यान भएपछि मनु पनि स्वर्गतिर गए। केही समयपछि भोकले पीडित भएको विशङ्कुनाम गरेको म्लेच्छ एक्लै शिकार खेल्दै त्यहाँ आइपुग्यो। धेरै गुफाहरू चहार्दै पहाडहरू नाघ्दै अत्यन्त भोकाएको त्यो म्लेच्छ यसै ठाउँमा आइपुग्यो। त्यस म्लेच्छले त्यही चाँपको जङ्गलमा चरेर पानी पिउँदै गरेको एउटा मृगलाई देख्यो। त्यो म्लेच्छ धनुषमा बलियोसित बाण चढाएर आनन्दपूर्वक चरिरहेको त्यस मृगलाई प्रहार गर्न तयार भयो ॥२५–२९॥

धनुषबाट आएको आवाज सुनेर आश्चर्य मान्दै त्यस मृगले झस्केर यताउति हेर्‍यो। आफूलाई पक्रन आएको म्लेच्छलाई देखेर चञ्चल आँखा तुल्याउँदै त्यो मृग डरले चाँपको रुखमुनिबाट भाग्यो। त्यसपछि ऊ यस लिङ्गलाई स्पर्श गर्दै झाडीभित्र लुकेर बस्यो। त्यसपछि त्यस म्लेच्छले मृगलाई लक्ष्य गरेर बाण हान्यो। बाणले मृगको रगत पियो र अङ्ग छेडेर पृथ्वीभित्र दबियो ॥३०–३२॥

प्राण गएको त्यो मृग यसै लिङ्गको नजिकैबाट भुईंमा पछारियो। त्यसपछि त्यस मृगलाई लिन आकाशबाट यान लिएर शिवजीका गण ओर्लिए। मृगशरीर छोडेपछि त्यस मृगको शरीर दिव्य भयो। दूतहरूले त्यसलाई यानमा राखेर आकाशमार्गबाट शिवलोक लगे। त्यसपछि मृगको त्यस्तो रूप, यान र शिवजीका दूतहरूको क्रियाकलाप देखेर त्यो म्लेच्छ बडो उत्सुकताका साथ ती सबै क्रियाकलाप हेर्न थाल्यो। त्यसपछि आज यो कस्तो घटना भयो भन्दै आश्चर्यचकित भएको उसले सरस्वतीको जललाई स्पर्श गरेपछि त्यो घटनाको सबै रहस्य बुझ्यो। विशङ्कु त्यो घटना देखेर ज्ञानी र विरक्त भयो। त्यसपछि उसले 'मैले आज यो कस्तो कर्म गरें' भन्दै अत्यन्त चिन्तित भयो। विरक्त भएको उसले त्यो त्यसै ठाउँमा धनुष फ्याँकेर दौडियो। त्यसपछि उसले यस लिङ्गलाई हातले आलिङ्गन गरेर शिरले प्रणाम गर्‍यो ॥३३–३८॥

---

७. लिङ्गे चाञ्जसा शङ्ककः, इति न.सं.पु.पाठः।
८. सचरं तम्, इति न.सं.पु.पाठः।
९. स्पृश्य, इति न.सं.पु.पाठः।
१०. व्यसुः, इति न.सं.पु.पाठः।
११. ....मनाऽभवत्तदा, इति न.सं.पु.पाठः।
१२. ह्यत्र प्रधावित, इति न.सं.पु.पाठः।

तल्लिङ्गञ्च समालिङ्ग्य दोर्भ्यां मूर्ध्ना ननाम सः। कियत्कालान्तरे म्लेच्छः पञ्चत्वं प्राप्तवानिह ॥३९॥
वन्याशनो विरक्तोऽसौ चैतत्पूजनतत्परः। फाल्गुनकृष्णपक्षस्य चतुर्दश्यामिहाययुः[१३] ॥४०॥
शिवगणाश्च तं यानात्[१४] शिवलोकं समानयन्। सोऽभूद्रुद्रगणश्रेष्ठः प्रमथानां पुरोगमः ॥४१॥
एतल्लिङ्गस्य संस्पर्शात् पुण्यान्मृत्युवशात्पुनः।

विरूपाक्ष उवाच

चित्रं मे जायते स्वान्ते श्रुत्वैतन्मुनिसत्तम ॥४२॥
मृगस्य चरितं त्वत्तश्चासुभृतामनुत्तमम्। मृगतनुं परित्यज्य चाभूद्दिव्यकलेवरः ॥४३॥
कथमसौ विना धर्मं वद मे तद्विभोऽधुना।

नेमुनिरुवाच

नृतनुं प्राप्य राजासौ भूत्वापि मेदिनीपतिः ॥४४॥
न कृतवान् पुरा तत्र पशुपतेः प्रदर्शनम्। पशुयोनौ ततो जातो धर्मकेतुर्नृपोत्तमः[१५] ॥४५॥
यद्यपि कृतवान् दानं[१६] तदा च भूरिशो नृपः। लिङ्गस्य[१७] स्पर्शनात्पुण्याद् गतवान् रुद्रधामनि ॥४६॥
एकमन्वन्तरे चाऽसौ पशुपतिं हि द्रक्ष्यति। भूत्वा च मेदिनीपोऽसौ चतुर्वर्गफलाशनः ॥४७॥
निर्वाणञ्च ततो विप्र प्रयास्यति न संशयः। पूर्णिमायां हि यः स्नात्वा सरस्वत्यां समर्हणैः ॥४८॥
पूजयेत्[१८] लिङ्गमेतद्वै तस्य पुण्यफलं शृणु। पूर्वजन्मकृतैः पापैः स मुक्तो नाऽत्र संशयः ॥४९॥
सर्वमेधफलं प्राप्य रुद्रलोके महीयते।

---

वनका कन्दमूल फल खाई विरक्त भएको यसले शिवलिङ्गको पूजा गर्‍यो र केही समयपछि त्यो मर्‍यो। फाल्गुण कृष्ण चतुर्दशीका दिन शिवका गणहरू यहाँ आएर त्यसलाई यानमा राखेर शिवलोक लगे। मरेपछि यस लिङ्गको स्पर्श गरेको पुण्यको प्रभावले गर्दा त्यो म्लेच्छ प्रमथ आदि गरिएका शिवजीका गणहरूमा अग्रगामी भयो ॥३९-४१½॥

विरूपाक्षले भने – हे मुनिश्रेष्ठ ! तपाईंले भनेको यो कुरा सुनेर मेरो हृदयमा आश्चर्य पैदा भएको छ। प्राणीहरूमा मृगको चरित्र अचम्म किसिमको छ। धर्म नगरीकन मृगको शरीरलाई छोडेर त्यस मृगले दिव्यशरीर कसरी प्राप्त गर्‍यो ? हे प्रभु ! यो कुरा मलाई अहिल्यै बताइदिनुहोस् ॥४२-४३½॥

नेमुनिले भन्नुभयो – यसले अघि मनुष्यजन्म पाएर पृथ्वीको स्वामी भए पनि पशुपतिको दर्शन गरेको थिएन। धर्मकेतु नाम गरेको त्यस राजाले धेरै दान दिए पनि भगवान् शङ्करको दर्शन नगरेको हुनाले पशुको योनिमा जन्म पायो। त्यस लिङ्गको स्पर्शबाट पैदा भएको पुण्यले गर्दा एक मन्वन्तरपछि पशुपतिको दर्शन पाएर त्यो स्वर्गलोक गयो। हे विरूपाक्ष ! धर्म, अर्थ, काम, मोक्ष चारै पुरुषार्थको भोग गरेर यो पृथ्वीको राजा हुनेछ। त्यसपछि यसको मुक्ति हुनेछ, यसमा शङ्का छैन ॥४४-४७½॥

जसले पूर्णिमामा सरस्वती नदीमा स्नान गरेर विभिन्न पूजासामग्रीले यस लिङ्गको पूजा गर्छ त्यसको पुण्य फल बताउँछु, सुन। पूर्णिमामा पूजा गर्ने व्यक्ति पूर्वजन्मका सम्पूर्ण पापबाट मुक्त हुन्छ र सम्पूर्ण यज्ञ गरेको फल प्राप्त गरेर ससम्मान रुद्रलोकमा बस्न पाउँछ ॥४८-४९½॥

---

१३. फाल्गुनकृष्णचतुर्दश्यां शिवगणा इहाययुः, इति न.सं.पु.पाठः।
१४. तमास्थाय च ते याने, इति न.सं.पु.पाठः।
१५. पशुयोन्युद्‌भुतस्तस्माद्धर्मकेतुर्नृपोत्तमः, इति न.सं.पु.पाठः।
१६. ददात्यपि बहून् दायान्, इति न.सं.पु.पाठः।
१७. लिङ्गे तत्, इति न.सं.पु.पाठः।
१८. पूजति, इति न.सं.पु.पाठः।

अतो वारुणदेशे त्वं भूयो गच्छ विरूपदृक् ॥५०॥
धनुषां त्रिसहस्रे च विदूरे साम्प्रतं द्विज । रामेश्वरं महालिङ्ग[१९] रामतीर्थेन वै समम् ॥५१॥
यत्र विराजते नित्यं बहुपुण्यफलप्रदम् ।
स्नात्वा च तीर्थे प्रसभं हि तत्र सम्पूजय त्वञ्च तमीश्वरं वै ।
यद्वाञ्छितं तद् हृदयेन नित्यं सम्प्राप्स्यसि श्रीवरमुत्तमञ्च ॥५२॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां
चम्पकेश्वरसरस्वतीकुण्डतीर्थयोर्माहात्म्यं नाम द्व्युत्तरशततमोऽध्यायः ॥१०२॥

---

हे विरूपाक्ष ! तिमी अब यहाँबाट पश्चिमतर्फ तीन हजार धनु अर्थात् बाह्र हजार हात पर धेरै पुण्यको फल दिने रामेश्वर महालिङ्ग रहेको ठाउँमा जाऊ ॥५०-५१½॥

तिमी त्यस तीर्थमा स्नान गरेर रामेश्वर महादेवको पूजा गर । त्यसपछि तिमीले आफ्नो इच्छाअनुसारको असल वर प्राप्त गर्नेछौ ॥५२॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा चम्पकेश्वर र सरस्वतीकुण्डतीर्थको माहात्म्यनामक
एकसय दोस्रो अध्याय पूरा भयो ।

---

१९. रामेश्वरो महालिङ्गः, इति न.सं.पु.पाठः ।

# त्र्युत्तरशततमोऽध्यायः

प्रभातीर्थ-रामेश्वरज्योतिर्लिङ्गयोर्माहात्म्यम्

स्कन्द उवाच

प्रभातीर्थे मुदा स्नात्वा रामेश्वरमपूपुजत्। नानोपहारकैर्भक्त्या जागृतवान्निशि द्विजः ॥१॥
माघकृष्णत्रयोदश्यां भक्त्याऽपृच्छन्मुनिं तदा। तीर्थस्य चैव माहात्म्यं लिङ्गस्य च विशेषतः ॥२॥

विरूपाक्ष उवाच

एतत्तीर्थस्य माहात्म्यं लिङ्गस्य मुनिसत्तम। श्रोतुमिच्छाम्यहं त्वत्तो रामेश्वरस्य साम्प्रतम् ॥३॥
समुद्भूतं कथं[1] लिङ्गं रामेश्वरमितीरितम्। केन लब्धो वरश्चात्र पूर्वं कथय मेऽधुना ॥४॥

नेमुनिरुवाच

आसीद्वीरः पुरा वत्स जमदग्निमुनेः सुतः। पर्शुराम इति ख्यातः क्षत्रियाणां निकन्दकः ॥५॥
क्वचित् कालान्तरे वीरो विरक्तो निर्ययौ गृहात्। हते पितर्युदासीनः राज्ञा केनापि[2] हेतुतः ॥६॥
तीर्थयात्रां व्रजन् क्षोणीं श्रुत्वा जीवमुखाच्च्युताम्। अत्रैव प्राप्तवांश्चासावुदासीनो घने वने ॥७॥
प्रभावती नदी श्रेष्ठा तथेयञ्च सरस्वती। अनयोः सङ्गमे चात्र सस्नौ ऋषेः सुतस्तदा ॥८॥
पितुर्वैरान्तरं यावत्कामं कृत्वा हृदि ध्रुवम्। सस्नौ सोऽत्र महातीर्थे सङ्कल्प्य क्षत्रनाशनम् ॥९॥
जजाप रुद्रमन्त्रं स वीरेण चेतसा मुने। षण्मासाभ्यन्तरे लिङ्गं समुद्भूतं तदग्रतः ॥१०॥
तपःकृष्णचतुर्दश्यामर्द्धरात्रे समर्हणैः। विलोक्य[3] पुरतो लिङ्गं रामो ननाम भक्तितः ॥११॥
तुष्टाव च मुहुर्भक्त्या रोमाञ्चितः परिक्रमन्। आविर्भूतं ततो ब्राह्मे रूपं भैरवभीषणम्[4] ॥१२॥
तस्मै प्रोवाच विप्रेश ! गम्भीरवचनं तदा।

---

## अध्याय-१०३

प्रभातीर्थ रामेश्वर ज्योतिर्लिङ्गको माहात्म्य

कार्तिक स्वामीले भन्नुभयो – त्यसपछि माघकृष्ण त्रयोदशीका दिन विरूपाक्षले प्रभातीर्थमा आनन्दसित स्नान गरेर भक्तिपूर्वक विभिन्न पूजासामग्रीहरूले रामेश्वर भगवान्को पूजा गरे। रातमा जाग्राम बसेर उनले तीर्थ तथा विशेषगरी त्यस लिङ्गको माहात्म्य नेमुनिसँग सोधे ॥१-२॥

विरूपाक्षले भने – हे मुनिश्रेष्ठ ! म हजुरबाट यो तीर्थ र रामेश्वर लिङ्गको माहात्म्य सुन्न चाहन्छु। यो लिङ्गको उत्पत्ति कसरी भयो ? यसलाई रामेश्वर किन भनियो ? अघि कसले यहाँ वर पायो ? मलाई यो सबै बताउनुहोस् ॥३-४॥

नेमुनिले भन्नुभयो – हे बाबु ! अघि क्षत्रियजातिको मूल नै सखाप पार्ने जमदग्निका परशुराम नामका वीर छोरा थिए। कुनै समयमा, कुनै राजाले आफ्नो बाबुलाई कारणवश मारेपछि विरक्त भएका ती वीर घरबाट निस्किए। तीर्थयात्राको क्रममा पृथ्वी घुम्दा बृहस्पतिको मुखबाट निस्किएका कुरा सुनेर उदास भएका ती परशुराम यही बाक्लो जङ्गल भएको ठाउँमा आए। जमदग्नि ऋषिका पुत्र परशुरामले श्रेष्ठ प्रभावती र सरस्वती नदीको यसै सङ्गममा स्नान गरे ॥८॥ पितालाई मार्ने व्यक्तिको वैरशुद्धिको कामना गरी सम्पूर्ण क्षत्रियलाई नाश गर्न सकूँ भन्ने सङ्कल्प गर्दै उनले यस तीर्थमा स्नान गरे ॥५-९॥

हे अगस्त्य मुनि ! त्यसपछि दृढ भई परशुरामले मनमनै शिवजीको मन्त्रजप गरे। त्यसको छ महिनाभित्रै उनको अगाडि शिवलिङ्ग प्रकट भयो। माघ कृष्ण चतुर्दशीको मध्यरातमा पूजासामग्री लिएर पूजा गरिरहेका परशुरामले आफ्नो अगाडि शिवलिङ्गलाई देखेर भक्तिपूर्वक नमस्कार गरे। त्यसपछि प्रसन्न हुँदै रोमाञ्चित भएर उनले भक्तिपूर्वक बारम्बार शिवजीको परिक्रमा गरे। ब्रह्ममुहूर्त भएपछि डरलाग्दो भैरवको स्वरूप लिएर भगवान् शङ्कर उनको अगाडि प्रकट हुनुभयो। त्यसपछि भगवान्ले हे ब्राह्मण ! भनेर गम्भीर वचनका साथ उनलाई भन्नुभयो ॥१०-१२½॥

---

१. कथं समुद्भवम्, इति न.सं.पु.पाठः।
२. कश्चिन्नृपेण, इति न.सं.पु.पाठः।
३. संदृश्य, इति न.सं.पु.पाठः।
४ आविर्भूतस्ततो ब्राह्मे रूपो भैरवभीषणः, इति न.सं.पु.पाठः।

रुद्र उवाच

तपसा चैव ते भक्त्या वीरेण चरितेन वै ॥१३॥
अदेयमपि दातव्यं तुष्टो राम यतो ह्यहम्। वरं वरय मत्तस्त्वं परशुराम ! साम्प्रतम् ॥१४॥
ददाम्यहञ्च तत्सर्वं यत्ते मनसि विद्यते।

परशुराम उवाच

नमस्ते भगवन् रुद्र ! लोकवाञ्छाफलप्रद ॥१५॥
भूतेश्वर नमस्तुभ्यं सर्वभूतदयाकर। व्यक्तायाव्यक्तदेवाय व्यक्ताव्यक्तविभूतये ॥१६॥
सर्वस्वान्तर्विदेऽजाय सर्वज्ञाय नमो नमः। परशुरामनामाहं पितुर्निधनकर्शितः ॥१७॥
भ्रामं भ्रामं[४] महीं सर्वां सम्प्राप्तोऽस्म्यत्र दैवत !। पुराकृतविपाकेन लब्धं त्वद्दर्शनं विभो ॥१८॥
योगिनामपि दुष्प्रापं त्वत्कृपया न संशयः। अवमत्यापि विप्रो मे क्षत्रियेण हतः पिता ॥१९॥
ततस्तद्दुःखदग्धोऽहं तद्विमोचय मेऽधुना। अविरोधेन वैरेण हतः पिता मम प्रभो ॥२०॥
वैरान्तं तदहं गन्तुं वाञ्छामि त्वदनुग्रहात्। वैरान्तञ्च पितुर्यो हि न गच्छति कदापि च ॥२१॥
स एव नारकी प्रोक्तस्तस्य धिग्जीवनं पुनः। यस्य कातरता स्त्रीवत्कापुरुषः स एव च ॥२२॥
लोकनिन्द्यो भवेन्नूनं[५] मलीमसैर्युतोऽनिशम्। अपि कैतवमाश्रित्य हन्तव्यः पितृघातकः ॥२३॥
यदि चैवं कृतं तस्य[६] प्रतिष्ठा लोकपूजिता। यदि स्यान्मम वैरान्तं[७] यास्याम्यहं सुनिश्चितम् ॥२४॥
त्वत्प्रसादान्महादेव ! लब्ध्वा त्वत्तो ध्रुवं वरम्। निःक्षत्रियां करिष्यामि मेदिनीञ्चाऽपि सर्वशः ॥२५॥
क्षत्रियेण हतो यस्मान्मे पिता त्वत्प्रसादतः। कृपयसि मयि त्वञ्चेद् प्रयच्छ मे यदीप्सितम् ॥२६॥
एतद्वरञ्च याचे त्वां नान्यं वाञ्छाम्यहं विभो।

---

शिवजीले भन्नुभयो – हे परशुराम ! तिम्रो तपस्या, भक्ति र वीरचरित्रबाट म प्रसन्न भएको छु। त्यसैले दिनै नहुने वर पनि म तिमीलाई दिन्छु। हे परशुराम ! अब तिमीले चाहेको वर मसित माग। तिम्रो मनमा लागेको जे छ त्यो सबै वरका रूपमा माग, म तिमीलाई सबै कुरा दिन्छु ॥१३–१४½॥

परशुरामले भन्नुभयो – हे भगवान् ! सम्पूर्ण प्राणीको इच्छाअनुरूप फल दिन सक्ने हे रुद्र ! हजुरलाई नमस्कार छ। सम्पूर्ण प्राणीमाथि दया गर्ने हे भूतेश्वर! हजुरलाई नमस्कार छ। हजुर व्यक्त पनि हुनुहुन्छ, अव्यक्त पनि हुनुहुन्छ। व्यक्त तथा अव्यक्त दुवै खालको ऐश्वर्यले पनि युक्त हुनुहुन्छ। सम्पूर्ण प्राणीको हृदयको कुरा जान्ने कहिल्यै नजन्मने सर्वज्ञ हजुरलाई बारम्बार नमस्कार छ। परशुराम नाम गरेको म पिताको निधनले विरक्त भएर पृथ्वी घुम्दै दैवसंयोगले यहाँ आइपुगेको छु। पूर्वजन्मको कर्म तथा हजुरको कृपाले गर्दा मैले योगीहरूले पनि प्राप्त गर्न नसक्ने हजुरको दर्शन पाएँ। यसमा कुनै शङ्का छैन ॥१५–१८½॥

हे भगवन् ! क्षत्रियहरूले अपमान गरी मेरा ब्राह्मण पितालाई मारे। त्यस दुःखबाट म डढेको छु, अब मलाई त्यस दुःखबाट छुट्याइदिनुहोस्। हे प्रभु ! वैरभावना नहुँदा पनि द्वेष गरी मेरा पितालाई मारियो। हजुरको अनुग्रहबाट म त्यो वैरसाधना गर्न चाहन्छु। जसले छोरो भएर बाबुको वैरीसँग वैरसाधना गर्दैन त्यो नरकमा पर्दछ। त्यो आइमाईजस्तै कातर हो, दुर्जन हो, त्यसको जीवनलाई धिक्कार छ। बारम्बार पापले युक्त भएको त्यस्तो व्यक्तिलाई लोकले निन्दा गर्दछ। त्यसैले छल गरेर भए पनि बाबुको हत्यारालाई मार्नैपर्छ। हे शङ्कर ! यदि वैरसाधना गर्ने हो भने लोकमा प्रतिष्ठा बढ्छ ॥१९–२३½॥

म निश्चय नै हजुरको अनुग्रहबाट वैरसाधना गर्न समर्थ हुनेछु। हे महादेव ! हजुरको कृपा प्राप्त गरी वर पाएँ भने म निश्चय नै सम्पूर्ण पृथ्वीलाई क्षत्रियहीन बनाउनेछु। हे प्रभु ! एउटा क्षत्रियले मेरो पिताको हत्या गरेको हुनाले हजुर ममाथि अनुग्रह गर्नुहुन्छ भने मैले चाहेको वर दिनुहोस्। म यही वर चाहन्छु, यसबाहेक मलाई अरू केही कुराको इच्छा छैन ॥२५–२६½॥

---

४. भ्राम्यमाणः, इति न.सं.पु.पाठः।
५. भवेत्सैव, इति न.सं.पु.पाठः।।
६. कृतस्तस्य, इति न.सं.पु.पाठः।
७. वैरान्ते मेऽप्यभूद् रुद्र, इति न.सं.पु.पाठः।

ईश्वर उवाच

एवमस्तु च कामं ते यत्ते मनसि विद्यते ॥२७॥

करिष्यसि ह्यवश्यं त्वं निःक्षत्रियामिमां रसाम्। प्राप्स्यसि त्वं महावीर पितुः शत्रौ जयं ध्रुवम् ॥२८॥

गच्छ परशुरामार्य ! मयि भक्तिरतोऽनिशम्।

नेमुनिरुवाच

इत्युक्त्वा भैरवो लिङ्गे तिरोदधे विरूपदृक् ॥२९॥

भासयन् स्वप्रभाभिश्च दिशो दश तदा पुनः। रामोऽपि प्रययौ शीघ्रं मध्यदेशं मुदाऽन्वितः ॥३०॥

शङ्करस्य प्रसादात्स लब्ध्वा वरं स्ववाञ्छितम्। राजस्त्रीणां प्रचक्रेऽसौ क्रन्दनं बहुशो भृशम् ॥३१॥

हत्वा च क्षत्रियान्युद्धे मुनिपुत्रस्ततो रुषा। निःक्षत्रिया कृता तेन मेदिनी सह पर्वतैः ॥३२॥

एकविंशतिधाऽजस्रमेतल्लिङ्गप्रसादतः। लिङ्गमेवं समुद्भूतं[८] तन्माहात्म्यं तथैव च ॥३३॥

प्रभातीर्थस्य माहात्म्यं भूयः शृणु विरूपदृक्। सिञ्जीनाम्नी पुरा चाऽऽसीद् बलिदैत्यसुता प्रिया ॥३४॥

भगिनी वज्रनाभस्य कन्या सा चाविवाहिता। नारदस्य मुखाच्छ्रुत्वा चाऽत्राऽगमन्मुदा च सा ॥३५॥

सखीभिः परिवार्याऽऽशु स्नातुमत्र समर्हणैः।

सा निस्तेजस्विनी हंसी चाऽन्तःपुरे सुकर्शिता ॥३६॥

सस्नौ चाऽत्र मुदा भक्त्या तीर्थं सम्पूज्य चाऽर्हणैः। प्रभासौन्दर्यरूपैश्च युक्तमिच्छुः स्वविग्रहम् ॥३७॥

कन्दर्पसमभर्त्तारं सस्नौ हृदि विभाव्य च। अत्रैव च समुद्भूता प्रभादेवी जलान्तरात् ॥३८॥

व्याजहार शुभं वाक्यं तां सा स्नानप्रतोषिता।

---

भगवान् शङ्करले भन्नुभयो- हे परशुराम ! तिम्रो मनमा जे इच्छा छ, त्यही होस्। अवश्य नै तिमीले यस पृथ्वीलाई क्षत्रियरहित तुल्याउनेछौ। हे महावीर ! पिताको वैरसाधनामा तिमीले विजय प्राप्त गर्नेछौ। हे परशुराम ! तिमी जाऊ, सधैँ मेरो भक्त बन ॥२७-२८½॥

नेमुनिले भन्नुभयो - यति भनी भैरवरूप भगवान् शङ्कर स्वकीय कान्तिले दशै दिशालाई उज्यालो तुल्याउँदै त्यसै लिङ्गमा अन्तर्ध्यान हुनुभयो। परशुराम पनि भगवान् शङ्करबाट आफूले चाहेजस्तो वर पाएर प्रसन्न हुँदै तुरुन्त मध्यप्रदेशतिर लाग्नुभयो। भगवान् शङ्करको अनुग्रहबाट जमदग्नि ऋषिका छोरा परशुरामले पितृहत्याको आवेगले पृथ्वीलाई २१ पटकसम्म घुमेर सम्पूर्ण क्षत्रियहरूलाई मारदिनुभयो। पहाडहरूले युक्त भएकी पृथ्वी क्षत्रियरहित बनिन्। परशुरामद्वारा मारिएका राजाका स्त्रीहरू ज्यादै नै रुन कराउन थाले। यसरी यस रामेश्वर लिङ्गको उत्पत्ति भएको हो। हे विरूपाक्ष ! प्रभातीर्थ र यस लिङ्गको माहात्म्य म फेरि बताउँछु, सुन ॥३१-३३॥

अघि वज्रनाभकी बहिनी र बलिदैत्यकी अत्यन्त प्यारी सिञ्जीनाम गरेकी अविवाहिता छोरी थिइन्। उनले नारदको मुखबाट यस तीर्थको वैशिष्ट्य सुनेपछि प्रसन्न हुँदै सखीहरूका साथ विभिन्न सामग्रीहरू लिएर स्नान गर्न यस तीर्थमा आइन् ॥३४-३५½॥

अन्तःपुरमा बसेको हुनाले हंसीजस्तो उनमा तेज थिएन। त्यसैले त्यस्तो तेजको कामना गरी उनले विभिन्न सामग्रीद्वारा भक्तिपूर्वक तीर्थको पूजा गरेर त्यहाँ स्नान गरिन्। आफ्नो शरीर कान्ति र सौन्दर्यले युक्त होस् र कामदेवजस्तो पति पाइयोस् भन्ने इच्छा हृदयमा राखेर उनले स्नान गरिन्। त्यहाँ सिञ्जीले स्नान गरेको हुनाले प्रसन्न भएकी प्रभा नाम गरेकी देवी जलको बीचबाट प्रकट भइन् र तिनलाई शुभवचन बोल्न थालिन् ॥३६-३८½॥

---

८. एवं समुद्भवं लिङ्गम्, इति न.सं.पु.पाठः।

प्रभादेव्युवाच

सिञ्जि ! यतो मयि स्नातं त्वया सङ्कल्पतेजसा[10] ॥३९॥

इहागत्य यदर्थं वै सर्वमेतत्[11] प्रलप्स्यसे। संस्नाय मयि भूयस्त्वं रामेश्वरं प्रपूजय ॥४०॥

ततस्ते वाञ्छितं सर्वं तत्प्रसादाद् भविष्यति। मयि स्नानाद्यतः सिञ्जि ! मन्नाम्ना त्वं भविष्यसि ॥४१॥

प्रभावतीति विख्यातिर्भूयात्ते प्रभया युता।

नेमुनिरुवाच

एवं दत्त्वा[12] वरन्तस्यै साऽन्तर्दधे जले द्विज ॥४२॥

सागमत्सखीभिः सार्द्धं सुप्रभानगरं स्वकम्। अत्र स्नानात्ततः सिञ्जी प्रभया संयुताऽभवत् ॥४३॥

प्रभावतीति विख्याता लोकैर्जानपदान्वयैः। अभूत्प्रभावती लोके[13] सा सर्वाधिकसुन्दरी ॥४४॥

भ्रातृणां बहुमान्या सा सर्वलक्षणसंयुता। विराजते नगर्यां सा सुप्रभायां निरन्तरम् ॥४५॥

लक्ष्मीमूर्त्तिश्च दैत्यानां देवासुरविमोहिनी। क्वचित्कालान्तरे विप्र ! प्रद्युम्नस्तां जहार वै ॥४६॥

श्रुत्वा तद्रूपसौन्दर्यं नारदवचनाद् द्रुतम्। अत्र स्नानात्पुनर्हंसी चैतल्लिङ्गसमर्हणात् ॥४७॥

लेभे कन्दर्पभर्त्तारं तेन सार्द्धं मुमोद सा।

कश्चिन्मुक्तः पुरा म्लेच्छः शृणु चाऽत्र विरूपदृक् ॥४८॥

पूर्वजन्मविपाकेन दुर्बलोऽभूत्स निर्धनः। मुण्डो नामाऽतिवृद्धोऽसौ कम्पिताङ्गः सुदुर्बलः ॥४९॥

अन्नदानैर्विहीनः प्राक् पत्नीपुत्रविवर्जितः। दुःखातुरो विरक्तोऽभूत्यक्तकामस्वविग्रहः ॥५०॥

---

प्रभादेवीले भनिन् – हे सिञ्जी ! सङ्कल्प गरेर तिमीले मेरो तीर्थमा आएर स्नान गर्‍यौ। यसैले तिमीले चाहेको सबै कुरा पाउँछ्यौ। फेरि पनि मेरो जलमा स्नान गरेर रामेश्वरको पूजा गर। उहाँको कृपाले तिम्रो सबै इच्छा पूर्ण हुनेछ। हे सिञ्जी ! मेरो जलमा स्नान गरेको हुनाले तिम्रो नाम पनि मेरै नामबाट रहनेछ। कान्तिले युक्त भएकी तिमी प्रभावतीका नामले प्रसिद्ध हुनेछ्यौ ॥३९–४१½॥

नेमुनिले भन्नुभयो – हे विरूपाक्ष ! यति भन्दै तिनलाई वर दिएर ती देवी त्यसै जलमा अन्तर्ध्यान भइन्। ती प्रभावती पनि आफ्ना सखीहरूका साथ आफ्नो सुप्रभा नामक गरेको शहरमा गइन्। यस तीर्थमा स्नान गरेको हुनाले ती सिञ्जी तेजले युक्त बनिन्। सम्पूर्ण प्रजा र उनीहरूका वंशमा उनी प्रभावतीका नामले प्रसिद्ध भइन्। ती प्रभावती सबैभन्दा राम्री थिइन्। सम्पूर्ण लक्षण भएकी उनी भाइहरूका बीचमा पनि मान्य भइन्। देवता र राक्षसलाई मोहित तुल्याउने लक्ष्मीकी मूर्तिजस्तै सुशोभित उनी सधैं सुप्रभा शहरमा बस्न लागिन् ॥४२–४५½॥

हे ब्राह्मण ! पछि कालान्तरमा नारदमुनिबाट प्रभावतीको रूप र सौन्दर्य थाहा पाएका श्रीकृष्णका पुत्र प्रद्युम्नले तिनलाई तुरुन्त अपहरण गरे। हाँसको जस्तो गति भएकी प्रभावतीले यसै ठाउँमा स्नान गरेर लिङ्गको पूजा गरेको हुँदा कामदेवलाई पतिका रूपमा पाई आनन्दपूर्वक रहिन् ॥४६–४७½॥

हे विरूपाक्ष ! पूर्वजन्मको कर्मले गर्दा निर्बल र दुर्बल भएको कुनै म्लेच्छ पनि पहिले यहाँ मुक्त भएको थियो। म तिमीलाई त्यसबारे बताउँछु, सुन। मुण्ड नाम गरेको त्यो म्लेच्छ अत्यन्त बूढो र दुर्बल थियो। यसका सबै अङ्गहरू काँप्थे। पत्नी र पुत्रहरूद्वारा पनि त्यागिएको यसले अघि अन्नदान गरेको थिएन। दुःखले विरक्त भएर सम्पूर्ण इच्छा र शरीरलाई समेत त्याग्न तयार भएको त्यो म्लेच्छ गुफा र पर्वत पार गर्दै यसै ठाउँमा आइपुग्यो ॥४९–५०½॥

---

९. स्नाता त्वया सङ्कल्पमानसा, इति न.सं.पु.पाठः।
१०. एतत्सर्वम्, इति न.सं.पु.पाठः।
११. दिश्य, इति न.सं.पु.पाठः।
१२. सा च, इति न.सं.पु.पाठः।

अत्रैव प्राप्तवान् म्लेच्छ उत्तीर्य कन्दराचलात्। एतल्लिङ्गमुतथ्येन स्नात्वाऽर्चितं ददर्श सः ॥५१॥
एतस्मिँश्च प्रभातीर्थे वृद्धेन मुनिना तदा। सोऽपि सस्नौ विरक्तेन हृदयेनाऽत्र साम्प्रतम् ॥५२॥
ददर्श स्वां तनुं भूयो हृष्टपुष्टां प्रहृष्टवान्। तज्जलेनैव लिङ्गञ्च पूजति स्म समर्हणैः ॥५३॥
उतथ्यस्य मुखाच्छ्रुत्वा भक्त्या पृष्टस्य सत्वरम्। अद्यैवाऽऽगत्य मे मृत्युर्नयतु मामिहैव तत् ॥५४॥
इति कृत्वा धिया वृद्धो लिङ्गं स्पृष्ट्वा ननाम हि। फाल्गुनस्य चतुर्दश्यां शुक्लपक्षस्य सोऽपि च ॥५५॥
पञ्चत्वं प्राप्तवानत्र चाऽर्द्धरात्रे विरूपदृक्। तमास्थाय च शैवास्ते याने च पुष्पके तदा ॥५६॥
निन्युः शिवपुरं दिव्यं रुद्रकन्याप्रसेवितम्। स एव चाऽभवच्छ्रेष्ठः प्रमथानां पुरोगमः ॥५७॥
अद्यापि विचरेन्नूनं रुद्रस्याऽनुचरोऽभवत्। चैत्रस्य पूर्णिमायां यः स्नात्वा लिङ्गं प्रपूजति ॥५८॥
याम्यं न दृश्यते तेन पातकैः प्रयुतेन च। अतस्त्रियोजने दूरे याम्यायां दिशि त्वं व्रज[१४] ॥५९॥
तत्र कालेश्वरश्चाऽऽस्ते कूटे कासुन्दभूभृतः।

त्वं कालतीर्थे विधिवद्धि विप्र ! स्नात्वा च कालेश्वरमर्चयाऽऽशु।
यद्वाञ्छितन्ते मनसा निशान्ते प्राप्नोषि शीघ्रं तदवश्यमार्य ॥६०॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां
प्रभातीर्थरामेश्वरयोर्माहात्म्यं नाम त्र्युत्तरशततमोऽध्यायः ॥१०३॥

---

उसले उतथ्य नाम गरेका वृद्ध ऋषिले यस प्रभातीर्थमा स्नान गरेर लिङ्गको पूजा गर्न लागेको देख्यो। विरक्त हृदय भएको त्यस म्लेच्छले पनि यहाँ स्नान गऱ्यो। स्नान गरेपछि उसले आफ्नो शरीरलाई हृष्टपुष्ट भएको देख्यो र प्रसन्न भयो। उसले यसबारे भक्तिपूर्वक उतथ्य ऋषिलाई सोध्यो। लिङ्गका विषयमा ऋषिका मुखबाट निस्किएका पवित्र वचनलाई सुनेर उसले त्यसै ठाउँको जल र पूजासामग्रीले शिवलिङ्गको पूजा गऱ्यो। आज नै मृत्युले आएर मलाई लैजाओस् भन्ने कामना गरेर त्यस बूढो म्लेच्छले शिवलिङ्गलाई छोएर नमस्कार गऱ्यो ॥५१-५४½॥

हे विरूपाक्ष ! फाल्गुण शुक्ल चतुर्दशीका दिन मध्यरातमा त्यो म्लेच्छ मऱ्यो। त्यसलाई शिवदूतहरूले पुष्पक विमानमा राखेर रुद्रकन्याबाट सु-सेवित गराउँदै शिवलोकमा लगे। त्यसै दिनदेखि त्यो बूढो प्रमथगणहरूमा अग्रगण्य भई शिवको सेवक बनेर आजसम्म रहेको छ। जसले चैत्र पूर्णिमाको दिन स्नान गरेर रामेश्वर शिवलिङ्गको पूजा गर्छ त्यो अनेकौं पापले युक्त भए तापनि त्यसले यमलोक हेर्नुपर्दैन ॥५५-५८½॥

हे विरूपाक्ष ! अब तिमी यहाँबाट बाह्रकोश टाढा रहेको दक्षिण दिशातिर जाऊ। त्यहाँ कासुन्द पर्वतको शिखरमा कालेश्वर महादेव बस्नुभएको छ ॥५९॥ तिमीले कालतीर्थमा विधिपूर्वक स्नान गरेर कालेश्वर भगवान्को पूजा गर। रातको अन्त्यमा अर्थात् बिहानीपख मनले जे चिताउँछौ, त्यो अवश्य पाउनेछौ ॥५९-६०॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा प्रभातीर्थ र रामेश्वरको माहात्म्यनामक
एकसय तेस्रो अध्याय पूरा भयो।

---

१३. याम्ये दिशि व्रज द्विज, इति न.सं.पु.पाठः।

# चतुरधिकशततमोऽध्यायः

## कालतीर्थकालेश्वरशिवलिङ्गयोर्माहात्म्यम्

### स्कन्द उवाच

प्रभासंयुक्तदेहोऽसौ विरूपाक्षोऽभवत्पुनः । तत्तीर्थेऽगस्त्य ! संस्नानात्तत्पूजनाद्विकिल्विषः ॥१॥
भूयोऽगमद्विरूपाक्षस्तेनैव मुनिना समम् । यत्र कालेश्वरं लिङ्गं[1] कासुन्दशैलशैखरे ॥२॥
स्नात्वा च विधिवल्लिङ्गं कालतीर्थे ह्यपूपुजत् । ऋषेर्वाक्यप्रमाणेन भक्त्या पञ्चोपचारकैः ॥३॥
माघकृष्णचतुर्दश्यां भूत्वा च जागृतो निशि । पप्रच्छ तञ्च माहात्म्यं तत्तीर्थलिङ्गयोस्तदा ॥४॥

### विरूपाक्ष उवाच

श्रोतुकामः पुनस्त्वत्तो मुनीनां प्रवर प्रभो । एतल्लिङ्गस्य संभूतिं[2] माहात्म्यमस्य साम्प्रतम् ॥५॥
एतत्तीर्थस्य माहात्म्यं श्रोतुमिच्छाम्यहं विभो । को मुक्तः स्नातको ह्यत्र वदैतत्सर्वविद्विभो ॥६॥

### नेमुनिरुवाच

हिमवतः सुतः शैव उज्जयन्ताभिधानकः । तत्कुक्षेश्च समुद्भूता घर्घरा सरितां वरा ॥७॥
वैतरणगिरेः सानोः सम्भूता च नदीवरा । वैतरणीति विख्याता घर्घरा पूर्वदेशतः ॥८॥
तयोश्च सङ्गमे पूर्वं कालः सस्नौ मुदाऽन्वितः । कालः शैलं समारुह्य तमाराधितवान् हरम् ॥९॥
द्वादशवत्सरान्ते च ह्येतल्लिङ्गसमुद्भवः । पौषशुक्लनवम्याञ्च निशायामार्द्रया युजि ॥१०॥
तस्माल्लब्ध्वा वरं कालः कालान् कलयति प्रभुः । अद्यापि निर्भरञ्जन्तून् गर्भस्थानपि सर्वशः ॥११॥
कालेनाऽऽराधितं लिङ्गं कालेश्वरमिति श्रुतम् । स्नातञ्च तेन पूर्वं हि कालतीर्थं ततः स्मृतम् ॥१२॥

---

## अध्याय – १०४

### कालतीर्थ र कालेश्वर शिवलिङ्गको माहात्म्य

कुमारस्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! त्यसपछि ती विरूपाक्ष त्यस रामेश्वरतीर्थमा स्नान तथा पूजा गर्नाले पापबाट मुक्त भएर तेजस्वी बने । पापमुक्त भई निर्मल बनेका विरूपाक्ष नेमुनिलाई साथमा लिएर जहाँ कालेश्वर भगवान् शङ्कर रहनुभएको थियो त्यसै कासुन्द पर्वतको उत्तम शिखरमा गए । ऋषिको निर्देशनबमोजिम उनले कालतीर्थमा स्नान गरेर विधिपूर्वक पञ्चोपचारविधिले कालेश्वरशिवलिङ्गको पूजा गरे । माघकृष्ण चतुर्दशीका दिन रातमा जाग्राम बसेर उनले नेमुनिसँग त्यस तीर्थ र लिङ्गको माहात्म्य सोधे ॥१–४॥

विरूपाक्षले भने – हे मुनिश्रेष्ठ ! हे प्रभु ! अब म हजुरबाट फेरि यस लिङ्गको उत्पत्ति र माहात्म्य सुन्न चाहन्छु । सर्वज्ञ हे प्रभु ! यस तीर्थमा स्नान गरेर को मुक्त भयो ? म यो तीर्थको माहात्म्य सुन्न चाहन्छु, यो सबै बताउनुहोस् ॥५–६॥

नेमुनिले भन्नुभयो –हिमालयका उज्जयन्त नाम गरेका छोरा शिवका भक्त थिए । उनकै कोखबाट नदीहरूमा श्रेष्ठ घर्घरा नाम गरेकी नदी पैदा भइन् । घर्घराको पूर्वतर्फ रहेको वैतरण नाम गरेको पहाडको टाकुराबाट एउटी उत्तम नदी झरेकी हुँदा तिनलाई वैतरणी भनियो । पहिले कुनै समयमा ती दुई नदीको सङ्गममा कालले आनन्दपूर्वक स्नान गरेका थिए । उनले त्यही पहाडमा चढेर भगवान् शङ्करको आराधना गरे ॥७–९॥

बाह्र वर्षपछि आर्द्रा नक्षत्रले युक्त भएको पौषशुक्ल नवमीको रातमा यस कालेश्वर लिङ्गको प्रादुर्भाव भयो । कालेश्वरबाट वर प्राप्त गरेर भगवान् महाकालले गर्भमा समेत रहेका सम्पूर्ण प्राणीहरूको कालको गणना गर्नुहुन्छ । कालले आराधना गरेर प्रादुर्भाव भएको हुँदा यस लिङ्गको नाम कालेश्वर रहेको हो । ती कालले नै अघि यहाँ स्नान गरेको हुँदा यस तीर्थलाई कालतीर्थ भनियो ॥१०–१२॥

---

१. कालेश्वरो लिङ्गः, इति न.सं.पु.पाठः । २. एतल्लिङ्गञ्च संभूतम्, इति न.सं.पु.पाठः ।

शृणु विप्रेश ! वक्ष्यामि यद् वृत्तान्तं पुराऽभवत्। कश्चिन्म्लेच्छोऽत्र मुक्तो वै पापो रुद्रप्रसादतः ॥१३॥
लम्बकर्णाभिधानोऽसौ मृगयाजीवनोऽनिशम्। क्वचित्कालान्तरे चाऽत्र प्राप्तवान्मृगयां गतः ॥१४॥
यमं ददर्श तत्तीर्थे तर्पयन्तञ्जलान्तरे। एतल्लिङ्गमिहागत्य पूजयन्तं हि भक्तितः ॥१५॥
लम्बकर्णोऽपि तत्तीर्थे सस्नौ कौतूहलेन च। तथा महर्षिणा स्नातं सूर्यं दृष्ट्वा[३] पुनः पुनः ॥१६॥
आरुह्य तद्गिरिं म्लेच्छश्चैतल्लिङ्गं समार्चयत्[४]। तपःसितचतुर्दश्यां विनिद्रश्च तमर्हयन् ॥१७॥
बभूव ज्ञानवान् म्लेच्छो लिङ्गसंस्पर्शनात्पुनः। आजन्मसञ्चितैः पापैर्निर्मुक्तः स्नानतो द्विज ॥१८॥
रुद्रयानं समादाय चाऽऽययुः प्रमथा इह। रुद्रानुशासनाद्रक्ता नन्दिमुखास्तदा मुदा ॥१९॥
श्रद्दधानं शिवध्याने पूजयन्तं शिवं निशि। विदध्युस्ते विमाने तं बहुमान्यं च सादरम् ॥२०॥
शङ्खभेरीमृदङ्गैश्च तालझर्झरनिःस्वनैः। निषेवन्ते स्म तं देव्यः पुष्पासारैर्विमानगम् ॥२१॥
सेवितञ्चाप्सरोभिस्तमुद्धूतं चामरैश्च ते। निन्यू रुद्रपुरं व्योम्नश्चाऽत्राऽभिषिच्य तज्जलैः ॥२२॥
अद्यापि व्यचरत्तत्र समं रुद्रेण वै च सः। प्रमथानां गरिष्ठोऽभूल्लम्बकर्ण इति श्रुतः ॥२३॥
एतल्लिङ्गप्रसादात्स तीर्थस्नानैर्विशेषतः। सदेहः प्रमथश्रेष्ठश्चाऽभूद् रुद्रप्रियो द्विज ॥२४॥
कालरात्रिः समध्यास्ते शिवशक्तिः सदैव सा[५]। अगम्यं तत्र गन्तुञ्च ह्यपि देवैर्नरैः किमु ॥२५॥
तत्र गमनमात्रेण गच्छति स्वर्गमुत्तमम्। यदि पश्यति तां रौद्रीं सायुज्यं प्राप्नुयात् क्षणात् ॥२६॥

---

हे विरूपाक्ष ! पहिले कुनै समयमा घटेको घटना म तिमीलाई बताउँछु, सुन। भगवान् शङ्करका अनुग्रहले गर्दा एठय कुनै पापी म्लेच्छ यस ठाउँमा आएर मुक्त भयो। लम्बकर्ण नाम गरेको त्यो म्लेच्छ सधैँ शिकार खेलेर जीवन बिताउँथ्यो। शिकारका लागि निस्किएको त्यो म्लेच्छ कुनै समयमा यहाँ आइपुग्यो। त्यसले यस तीर्थको जलको बीचमा रहेर तर्पण दिँदै गरेका यमराजलाई देख्यो। त्यसपछि उसले लिङ्गको समीपमा आएर भक्तिपूर्वक यमराजले पूजा गरेको देख्यो। स्नान गरेर महर्षिले बारम्बार सूर्योपस्थापन गर्न लागेको दृश्य देखेर उत्सुक भएको त्यस लम्बकर्णले पनि यस तीर्थमा स्नान गऱ्यो ॥१३-१६॥

त्यस म्लेच्छले स्नान गरेपछि पहाडमा चढेर यस शिवलिङ्गको पूजा गऱ्यो। माघशुक्ल चतुर्दशीका दिन जाग्राम बसेर शिवलिङ्गको आराधना गऱ्यो। हे विरूपाक्ष ! त्यस म्लेच्छले यस लिङ्गको स्पर्श गरेको हुनाले तुरुन्त ऊ ज्ञानी भयो र यस तीर्थमा स्नान गरेको हुनाले जन्मदेखि लागेका पापबाट पनि ऊ मुक्त भयो। त्यसपछि भगवान् शङ्करको आज्ञाबमोजिम नन्दी आदि प्रमथ गणहरू प्रसन्न हुँदै शिवजीको यान लिएर यहाँ आए। शिवजीको ध्यानमा तत्पर भई रातमा शिवजीको पूजा गरेका कारण आदरणीय बनेको त्यस म्लेच्छलाई शिवका गणहरूले सत्कारपूर्वक विमानमा राखे। विमानमा बसेको त्यस म्लेच्छलाई शङ्ख, कर्नाल, मादल, ताल, झ्याम्झरका स्वरहरूका साथ फूलको वर्षा गरेर देवीहरूले सेवा गरेका थिए ॥१७-२१॥

अप्सराहरूले चामर हल्लाउँदै त्यस म्लेच्छको सेवा गरे। प्रमथ आदि गणहरूले त्यस तीर्थको जलद्वारा उसलाई अभिषेक गरेर शिवपुरमा लगे। लम्बकर्ण नामले प्रसिद्ध त्यो म्लेच्छ आज पनि भगवान् शङ्करको सेवक बनेर त्यहाँ रहेको छ। हे विरूपाक्ष ! त्यस शिवलिङ्गको अनुग्रह र विशेष गरी तीर्थको स्नानको प्रभावले गर्दा त्यो लम्बोदर शरीरैसित प्रमथ गणमा उत्तम बन्न पुग्यो र शङ्करको प्रिय भक्त बन्यो। यस ठाउँमा कालरात्रीले पनि शक्तिले सम्पन्न भगवान् शङ्करको ध्यान गर्नुहुन्छ। देवताहरूलाई पनि त्यस ठाउँमा पुग्न कठिन छ भने मानिसको के कुरा ! त्यस ठाउँमा गयो भने मात्रै पनि उत्तम स्वर्ग प्राप्त हुन्छ। यदि ती कालरात्रिको दर्शन गरियो भने त तुरुन्तै ईश्वरमा विलीन भइन्छ ॥२२-२६॥

---

३. पश्य, इति न.सं.पु.पाठः।
४. समर्चितम्, इति न.सं.पु.पाठः।
५. शिवशक्तिं समत्र सा, इति न.सं.पु.पाठः।

नमस्यतामिहाऽस्थाय कालरात्रिं महोदरीम्। दण्डवत्पातयित्वाङ्गं तत्फलं लप्स्यसे ध्रुवम् ॥२७॥
कालतीर्थे च यः स्नात्वा कालेश्वरं प्रपूजति। कालपाशैर्विनिर्मुक्तः कालेश्वरपुरं व्रजेत् ॥२८॥
दूरे तृतीये खलु योजने ते यत्र स्थितो विप्र नटेश्वरो वै।
तत्र त्रिकूटाचलशेखरेऽसौ ब्रह्माख्यतीर्थेन समं प्रतीच्याम् ॥२९॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां
कालतीर्थकालेश्वरयोर्माहात्म्यं नाम चतुरधिकशततमोऽध्यायः ॥१०४॥

---

यहाँ बसेर ठूलो पेट भएकी ती कालरात्री महादेवीलाई साष्टाङ्ग दण्डवत् प्रणाम गर, त्यसको फल तिमी अवश्य पाउनेछौ। जसले कालतीर्थमा स्नान गरेर कालेश्वर भगवान्को पूजा गर्छ त्यो व्यक्ति कालको पाशबाट मुक्त भएर कालेश्वर अर्थात् भगवान् शङ्करको लोकमा ज न्छ ॥२७-२८॥

हे ब्राह्मण विरूपाक्ष ! त्यस ठाउँबाट बाह्र कोस पश्चिममा रहेको त्रिकूट पर्वतको शिखरमा ब्रह्मतीर्थका साथ भगवान् नटेश्वर विराजमान हुनुहुन्छ ॥२९॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा कालतीर्थ र कालेश्वरको माहात्म्यनामक
एकसय चौथो अध्याय पूरा भयो।

# पञ्चोत्तरशततमोऽध्यायः

ब्रह्मतीर्थनटारम्भेश्वरशिवलिङ्गयोर्महिमा

स्कन्द उवाच

ततश्चाभूद्विरूपः सः सर्वसत्त्वदयाकरः। कालतीर्थे मुने स्नात्वा तत्रेश्वरसमर्हणात् ॥१॥
भूयोऽगमत्प्रतीच्यां स मुनिना तेन वै समम्। यत्र नृत्येश्वरं लिङ्गं त्रिकूटाद्रौ विराजते ॥२॥
ब्रह्मतीर्थे द्विजः स्नात्वा नृत्येश्वरमपूपुजत्। त्रिकूटाद्रिं समारुह्य वाचा वदन् शिवेति सः ॥३॥
माघकृष्णकुहौ रात्रौ पूजन्[1] जागृतवान् पुनः। अपृच्छत् स माहात्म्यं तं नेमुनिं तीर्थलिङ्गयोः ॥४॥

विरूपाक्ष उवाच

मुनीनां प्रवर ! श्रीमन् सर्ववृत्तान्तविद्विभो। श्रोतुकामः पुनश्चाऽहं त्वत्तः सर्वविदोऽधुना ॥५॥
एतल्लिङ्गस्य माहात्म्यं तीर्थस्य च विशेषतः। केन प्रकाशितं पूर्वमस्माल्लब्धं पुरा फलम् ॥६॥
उद्भूतञ्च कथं लिङ्गमेतदचलशेखरे। केनैतदर्चितं पूर्वं ब्रूहि मे तद्विभोऽधुना ॥७॥

नेमुनिरुवाच

ब्रह्मविष्णुसहस्राक्षा हाहा हूहूश्च तुम्बुरुः। गन्धर्वकिन्नराश्चाऽत्र हरं द्रष्टुं समाययुः ॥८॥
अस्मिंस्तीर्थेऽमराः स्नात्वा चैतद्गिरिं समारुहन्। संतस्थुरत्र कूटे वै निशामेकां शिवस्मराः[2] ॥९॥
हा नाथ ! शङ्करार्येश क्व गतोऽस्यधुना विभो। दैत्यार्दितांश्च नस्त्यक्त्वा वदन्तश्च मुहुर्मुहुः ॥१०॥
व्याजहार विधिर्वाक्यं तदा तेभ्यो विरूपदृक्। निशि संसदि तान् प्रेक्ष्य तारकाच्च भयातुरान् ॥११॥

---

## अध्याय – १०५

ब्रह्मतीर्थ र नटारम्भेश्वर शिवलिङ्गको महिमा

कुमार स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! कालतीर्थमा स्नान गरेर त्यहाँ रहेका भगवान् शङ्करको पूजा गरेपछि विरूपाक्ष सबै प्राणीका निमित्त दयालु बने। त्यसपछि विरूपाक्ष नेमुनिलाई साथमा लिई पश्चिम दिशातिर रहेको त्रिकूट नाम गरेको जुन पर्वतमा भगवान् नृत्येश्वर बस्नुहुन्थ्यो, त्यसै ठाउँमा गए। ब्राह्मण विरूपाक्षले ब्रह्मतीर्थमा पुगेर स्नान गरे। त्यसपछि उनले त्रिकूटचलमा चढेर शिवजीको नाम उच्चारण गर्दै नृत्येश्वर (नटेश्वर) भगवान्को पूजा गरे। माघकृष्ण अमावास्याको रातमा भगवान् शङ्करको पूजा गरेर उनी जाग्राम बसे। त्यसपछि उनले नेमुनिसँग त्यस तीर्थ र लिङ्गको माहात्म्य सोधे ॥१–४॥

विरूपाक्षले भने – सम्पूर्ण वृत्तान्तका ज्ञाता हे मुनिश्रेष्ठ ! सर्वज्ञ हजुरसित म यो लिङ्गको र विशेष गरी तीर्थको माहात्म्य सुन्न चाहन्छु। हे प्रभु ! यस लिङ्गलाई पहिले कसले प्रकाशित गरेको थियो ? यसको आराधनाबाट अघि कसले फल पायो ? त्रिकूटपर्वतमा यस लिङ्गको उत्पत्ति कसरी भयो र पहिले यस लिङ्गको पूजा कसले गरेको थियो ? अब ती सबै कुरा मलाई बताउनुहोस् ॥५–७॥

नेमुनिले भन्नुभयो – ब्रह्मा, विष्णु, इन्द्र, हाहा, हूहू, तुम्बुरु, गन्धर्व र किन्नरहरू भगवान् शङ्करलाई हेर्न यहाँ आए ॥८॥ देवताहरूले यस तीर्थमा स्नान गरे र त्रिकूटचलमा चढे। उनीहरू शिवजीको ध्यान गर्दै यस पर्वतको शिखरमा एक रात बसे। त्यसपछि उनीहरूले हे नाथ ! हे शङ्कर ! हे ईश्वर ! दैत्यबाट सताइएका हामीलाई छाडेर नजानुहोस् भन्दाभन्दै पनि हजुर अहिले कहाँ जानुभएको छ भनी प्रार्थना गरे। हे विरूपाक्ष ! तारक दैत्यको भयका कारण डराएका ती देवताहरूलाई राति ब्रह्माजीले सभामा भन्नुभयो ॥८–११॥

---

१. पूज्य, इति न.सं.पु.पाठः। २. शिवं स्मरन्, इति न.सं.पु.पाठः।

ब्रह्मोवाच

भो भो देवा ध्रुवं यूयं विषण्णवदनाः किमु। त्रैलोक्यान्वेषणे रक्तैः किञ्च कार्यं श्रमार्दितैः[३] ॥१२॥

सम्मजत शिवं साक्षात्पञ्चभूतात्मकं खलु। अस्ति पञ्चात्मकं यत्र तत्र शिवो न संशयः ॥१३॥

स्वैः स्वैर्वाद्यैस्तथा गीतैः सेवध्वं तं महेश्वरम्। भक्तिं सम्प्रेक्ष्य वो रुद्रश्चाऽत्रैवाऽऽविर्भविष्यति ॥१४॥

नेमुनिरुवाच

ब्रह्मणा प्रेरितं वाक्यं श्रुत्वा देवाः प्रहर्षिताः। सत्योक्तं तेन कृत्वेति चाऽपूपुजन् विधिं तदा ॥१५॥

ब्रह्मा चाऽताडयत्तालं मृदङ्गं तुम्बुरुस्तथा। विष्णुर्नान्दीं पठन्भक्त्या हाहा हूहूर्जगौ मुहुः ॥१६॥

तपःकृष्णचतुर्दश्यामर्द्धनक्तं तदा द्विज। एतल्लिङ्गं समुद्भूतं गीतवाद्यमहोत्सवैः ॥१७॥

आलोक्य देवताः लिङ्गं सम्भूतं पुरतः तदा[४]। आत्मानं मेनिरेऽत्यन्तं कृतार्थनिव साम्प्रतम् ॥१८॥

ततो देवा उपासन्ते चैतल्लिङ्गं महोत्सवैः। स्तवैर्वाद्यार्चनैर्गीतैर्हर्षविस्फुल्लमानसाः ॥१९॥

अस्मिन्काले पुनर्लिङ्गादुत्पत्य च मुदा भृशम्। अनर्तीच्चैव[५] रुद्रोऽसौ तेषां मध्ये महोत्सवैः ॥२०॥

प्रणेमुर्देवताः भक्त्या नृत्यन्तं तं मुहुर्मुदा। स्तवैर्गीतैस्तथा वाद्यैरसेवन्त नटेश्वरम् ॥२१॥

ततोऽब्रवीन्महादेवो देवेभ्यः प्रसभं द्विज। तेषां भक्त्या स्तवैर्गीतैर्नम्रवाद्यैः प्रहर्षयन् ॥२२॥

---

ब्रह्माजीले भन्नुभयो – हे देवता हो ! तिमीहरू किन अँध्यारो मुख लगाउँछौ ? धेरै परिश्रमका साथ तीनै लोकमा भगवान् शिवको खोजी गरिरहेका तिमीहरूले के पायौ ? तिमीहरू स्थिर भएर पृथ्वी, जल, तेज, आकाश र वायु रूप भएका साक्षात् शिवजीको आराधना गर। जहाँ ती पाँच कुरा छन्, शिवजी त्यहाँ अवश्य हुनुहुन्छ, यसमा कुनै शंका छैन। हामी आ–आफ्नो गीत तथा बाजाहरूद्वारा भगवान् शङ्करको सेवा गरौँ। हाम्रो भक्ति देखेर भगवान् शङ्कर यसै ठाउँमा प्रकट हुनुहुनेछ ॥१२–१४॥

नेमुनिले भन्नुभयो – ब्रह्माजीको यस्तो वचन सुनेर देवताहरू प्रसन्न भए र ब्रह्माजीको वचनलाई सत्य मानी उहाँको पूजा गरे। ब्रह्माजीले ताली बजाउनुभयो, तुम्बुरुले मादल बजाए, विष्णुले नन्दीपाठ पढ्नुभयो अनि हाहा र हूहूले भक्तिपूर्वक बारम्बार शङ्करको भजन गरे। माघकृष्ण चतुर्दशीका दिन आधा रातमा गीत, वाद्य र ठूलो उत्सव भइरहेको समयमा भगवान् शिवको नटेश्वर लिङ्गको प्रादुर्भाव भयो। देवताहरूले आफ्नो अगाडि लिङ्गको उत्पत्ति भएको देखी त्यस समयमा आफूहरू अत्यन्त कृतार्थ भएको ठाने ॥१५–१८॥

त्यसपछि हर्षले प्रसन्न चित्त भएका देवताहरूले स्तुति, वाद्य र पूजा गरी ठूलो उत्सवका साथ यस लिङ्गको उपासना गरे। यसरी ठूलो उत्सव भइरहेको समयमा त्यस लिङ्गबाट प्रकट भएर भगवान् रुद्र प्रसन्न हुँदै मज्जाले नाच्न थाल्नुभयो। स्तुति, गीत र वाद्यद्वारा नटेश्वर भगवान् शङ्करको आराधना गरिरहेका देवताहरूले नाच्न लाग्नुभएका भगवान् शङ्करलाई देखेर प्रसन्न हुँदै भक्तिपूर्वक बारम्बार नमस्कार गरे। त्यसपछि देवताहरूको भक्ति, स्तुति, गीत, नमस्कार र वाद्यवादनद्वारा खुसी हुनुभएका भगवान् शङ्करले उनीहरूलाई भन्नुभयो ॥१९–२२॥

---

३. त्रैलोक्यान्वेषयद्भिः किं कार्यं परिश्रमार्दितैः, इति न.सं.पु.पाठः। ४. पुरतः सम्भवं तदा, इति न.सं.पु.पाठः।
५. नरीनृत्यत, इति न.सं.पु.पाठः।

नृत्येश्वर उवाच

भवद्भिर्गीतवाद्यैश्च ह्यत्र देवाः प्रतोषिताः। नर्त्तितोऽहं मुदाऽत्यन्तं बहु सुखं महोत्सवैः ॥२३॥
युष्माभिर्नर्त्तितोऽद्याऽहं यतो भक्तिपुरःसरैः। तस्मात् सिध्यति कार्यं वो दानवान्मा बिभीयताम् ॥२४॥
नर्त्तनेन सकृद्यो मां वाद्यगीतैश्च सेवते। अद्यप्रभृति तञ्चाऽहं तारये दुःखसागरात् ॥२५॥
युष्माभिः सेविता लोकाश्चाऽऽरम्भान्मे नटस्य च। एतल्लिङ्गं वदिष्यन्ति नटारम्भ इतीह ते ॥२६॥
यः पश्यति नरो वामे लिङ्गमूर्तिञ्च भक्तितः। मुक्तो जन्मार्जितैः पापैर्मम लोकं स गच्छति ॥२७॥
ब्रह्मतीर्थे मुदा स्नात्वा चाऽऽरुह्यैनं गिरिं मुदा। स्पृशति[६] लिङ्गमेतद्यो मद्रूपोऽसौ न संशयः ॥२८॥

नेमुनिरुवाच

इत्युक्त्वाऽन्तर्हिते लिङ्गे महादेवे विरूपदृक्। देवाश्च प्रययुः स्वर्गं लब्धवराः गतज्वराः ॥२९॥
कश्चिद् द्विप्रः पुरा चाऽत्र निर्वाणं गतवान् शिवे। बहुपापान्वितोऽप्यार्य शृणु तच्च वदाम्यहम्[७] ॥३०॥
आसीत्पूर्वं द्विजश्रेष्ठो देवशर्मेति विश्रुतः। लोकपूज्यः श्रुतिज्ञोऽसौ नृपमान्यो द्विजोत्तमः ॥३१॥
युक्त आजन्म मालिन्याद्[८] बहुप्रतिग्रहैर्हि सः। महादानादिभिः सर्वैः पात्रापात्राविचारितैः[९] ॥३२॥
चतुरंशञ्च धर्माय देवाग्निभ्यां द्विजन्मने। अतिथये स्वभृत्याय द्वावंशौ तद्धनं स्मृतम् ॥३३॥
न दानाय न धर्माय न देवाय न चाऽग्नये। तद्धनमभवद्विप्र सञ्चयार्थं हि केवलम् ॥३४॥

---

नृत्येश्वरले भन्नुभयो – हे देवता हो ! तपाईंहरूले यहाँ गीत, वाद्य आदिद्वारा मलाई प्रसन्न तुल्याउनुभयो। तपाईंहरूले ठूलो उत्सव गरी आनन्दका साथ मलाई नचाएर अत्यन्त खुसी बनाउनुभएको छ। तपाईंहरूले भक्तिपूर्वक आज मलाई नचाउनुभएको हुनाले तपाईंहरूको कार्यसिद्धि हुनेछ, दानवहरूबाट नडराउनुहोस्। अबदेखि जुन व्यक्तिले नृत्य, वाद्य तथा गीतद्वारा एकपटक मात्रै भए पनि मेरो आराधना गर्दछ, त्यस्तो व्यक्तिलाई म यस दुःखरूपी सागरबाट पार लगाउनेछु। तपाईंहरूले मेरो यस नट्यवतारको प्रारम्भदेखि नै सेवा गर्नुभएको हुनाले मानिसहरूले सधैँ यस लिङ्गलाई नटरम्भेश्वर भन्नेछन् ॥२३-२६॥

जो व्यक्तिले बायाँतर्फ रहेको मेरो यस लिङ्गमय मूर्तिको भक्तिपूर्वक दर्शन गर्छ त्यो व्यक्ति जन्मभर गरेका पापबाट मुक्त भई मेरो लोकमा जान्छ। ब्रह्मतीर्थमा प्रसन्नतापूर्वक स्नान गरी यस पर्वतमा चढेर जसले मेरो यस लिङ्गलाई स्पर्श गर्छ त्यो मेरै स्वरूप हुन्छ, यसमा शङ्का छैन ॥२७-२८॥

नेमुनिले भन्नुभयो – हे विरूपाक्ष ! यति भनेर भगवान् शङ्कर त्यसै लिङ्गमा अन्तर्धान हुनुभयो। वर पाएपछि पीडाबाट मुक्त भएका देवताहरू पनि स्वर्गतिर गए हे विरूपाक्ष ! धेरै पाप गरेता पनि यस ठाउँमा आएर कुनै ब्राह्मण अघि शिवजीमा विलीन भएका थिए, त्यो कुरा म बताउँछु, सुन ॥२९-३०॥

अघि देवशर्मा नाम गरेका ब्राह्मणश्रेष्ठ थिए, उनको समाजमा आदर थियो, वेदमा उनी निपुण थिए। राजाले पनि उनलाई मान्दथे। द्विजातिमा उनको अग्रगण्य स्थान थियो। उनले जीवनभरि धेरै पात्र, अपात्र, विचार नगरीकन प्रत्यवाय लाग्ने ठूला-ठूला सम्पूर्ण दानहरू लिए। त्यस्तो धन चार भागमा एक भाग धर्मलाई दिनुपर्छ। दुई भाग देवता, अग्नि, ब्राह्मण, अतिथि र आफ्नो सेवकलाई दिनुपर्छ। अरू बाँकी रहेको मात्र उसको धन हुन्छ भनेर लेखिएको छ। त्यो दान न धर्का निमित्त भयो, न देवताले पाए, न त अग्निलाई मिल्यो। त्यो धन त सञ्चयका निमित्त मात्र भयो ॥३१-३४॥

---

६. स्पर्शति, इति न.सं.पु.पाठः।
७. वदाम्यहञ्च तत्, इति न.सं.पु.पाठः।
८. आजन्मपर्यन्तम्, इति न.सं.पु.पाठः।
९. पात्रापात्राविचारितैः, इति न.सं.पु.पाठः।

ततः कालान्तरैकस्मिन् पशुत्वं प्राप्तवान् द्विजः । तिर्यग्योनौ पुनश्चाऽसावजायत वनेचरः ॥३५॥
भूत्वाऽसौ मर्कटोऽजस्रं भूयो जन्मनि जन्मनि । भ्रमति स्म वनं घोरं षष्टिवर्षसहस्रशः ॥३६॥
क्षुत्पिपासातिशीतार्त्तो भ्रमति स्म वने मुहुः । प्रतिग्रहार्जिताऽदानात्तत्पापैर्लिप्तविग्रहः ॥३७॥
कदाचिद्दैवयोगेन ब्रह्मतीर्थे जलं पपौ । ज्येष्ठकृष्णाष्टमीयोगे दिनेऽम्भसि निमज्जितः ॥३८॥
ब्रह्मतीर्थे जले स्नात्वा स तत्पापैर्विमोचितः । त्रिकूटाद्रिं समारुह्य लिङ्गञ्च पाणिना स्पृशन् ॥३९॥
अजहात्तत्तनुं सोऽत्र लिङ्गस्पर्शनपुण्यतः । दिव्याङ्गोऽभूच्च निष्पापस्त्र्यक्षो डमरुशूलधृक् ॥४०॥
तस्मिन्नवसरे दूता रुद्रप्रचोदिता इह । सुरा ययुर्मुदात्यन्तं पुष्पकैर्यानपाणयः ॥४१॥
तं तद्याने समास्थाय निन्युः शिवपुरं हि ते । साधु साध्विति चादृत्य रुद्रकन्याप्रसेवितम् ॥४२॥
स एव ह्यभवद्विप्र रुद्रपार्श्वचरोऽनिशम् । प्रमथानां गरिष्ठोऽसौ महादेवप्रियः परः ॥४३॥
भूयो गच्छ विरूपाक्ष दूरे चेतः[१०] त्रियोजने । उद्दारकेश्वरस्तत्रोत्तरे कनखलान्तिके ॥४४॥
धर्मगङ्गा परा तत्र स्वच्छा चोवाह सन्ततम् । विष्णोर्घर्मात्समुद्भूता जाते युद्धे[११] सुरैः सह ॥४५॥

व्याघ्राचले तं हरमादरेण[१२] सम्पूजयार्याऽऽशु विरूपनेत्र ।
प्रलप्स्यसे त्वं प्रवरञ्च नूनमुदारबुद्धिञ्च कठोरलभ्याम् ॥४६॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां
ब्रह्मतीर्थनटारम्भेश्वरयोर्माहात्म्यं नाम पञ्चोत्तरशततमोऽध्यायः ॥१०५॥

---

केही समयपछि ती ब्राह्मण मरेर जङ्गलमा हिंड्ने पशुयोनिमा जन्म लिन पुगे। प्रत्येक जन्ममा बाँदर भएर ती ब्राह्मण साठी हजार वर्षसम्म डरलाग्दो जङ्गलमा बाम्बार घुमिरहेका थिए। प्रतिग्रहबाट आर्जन गरेको सम्पत्ति अरुलाई नदिएको हुँदा त्यसै पापले ग्रस्त शरीर भएका ती ब्राह्मण भोक, प्यास र ठण्डीले पीडित भएर बारम्बार जङ्गलमा घुम्दथे ॥३५-३७॥

कुनै दिन दैवसंयोगले ती ब्राह्मणले ब्रह्मतीर्थमा गएर पानी पिए। ज्येष्ठकृष्ण अष्टमीका दिन तिनले त्यहाँ स्नान गरे ॥३८॥ ब्रह्मतीर्थको जलमा स्नान गरेर ती पापबाट मुक्त भए। त्यसपछि त्रिकूटचलमा चढेर हातले भगवान् शङ्करको लिङ्गलाई स्पर्श गरे। त्यसै लिङ्गको स्पर्श गरेका पुण्यको प्रभावले गर्दा उनले त्यो शरीर छोडे र पापमुक्त भएको दिव्य शरीर लिए। तिनका तीन आँखा थिए र तिनले डमरु, त्रिशूल धारण गरेका थिए। त्यसैबेला भगवान् शङ्करको निर्देशन अनुसार दिव्य शिवजीका दूतहरू पुष्पक विमान लिएर अत्यन्त प्रसन्न हुँदै यहाँ आइपुगे। तिनलाई त्यस यानमा राखेर धन्यवाद दिँदै रुद्रकन्याद्वारा सुसेवित गराएर आदरपूर्वक उनीहरूले शिवपुरमा लगे ॥३८-४२॥

हे विरूपाक्ष ! तिनै ब्राह्मण प्रमथगणहरूमा श्रेष्ठ भएर भगवान् शङ्करका सधैँ पार्श्ववर्ती भएर रहेका छन्। उनी भगवान् शङ्करका अत्यन्त प्रिय छन्। हे विरूपाक्ष ! अत्र तिमी यहाँबाट तीन योजन टाढा रहेको कनखल पर्वतको नजिकै जाऊ। त्यहाँ उद्दालकेश्वर भगवान् बस्नुभएको छ। राक्षससँग लडाई गर्दा भगवान् विष्णुको शरीरबाट निस्किएको पसिनाबाट पैदा भएकी धर्मगङ्गा नाम गरेकी स्वच्छ नदी त्यहाँ निरन्तर बगिरहेकी छन्। हे विरूपाक्ष ! व्याघ्राचल नाम गरेको पर्वतमा गएर तिमी आदरपूर्वक भगवान् शङ्करको पूजा गर। तिमीले बडो कष्टबाट प्राप्त गर्न सकिने उत्तम वर बुद्धि पाउनेछौ ॥४३-४६॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा ब्रह्मतीर्थ र नटारम्भेश्वरको माहात्म्यनामक
एकसय पाँचौं अध्याय पूरा भयो।

---

१०. चातो दूरे, इति न.सं.पु.पाठः ।
११. युध्यमाने, इति न.सं.पु.पाठः ।
१२. हरमाद्रयन्वै, इति न.सं.पु.पाठः ।

# षडुत्तरशततमोऽध्यायः

## उद्दालकेश्वरशिवलिङ्गमहिमा

### स्कन्द उवाच

ब्रह्मतीर्थे सकृत् स्नात्वा तल्लिङ्गपूजनाद् द्विज । चित्ताह्लादननिष्पापोऽभवत् दिव्येक्षणो[1] मुने ॥१॥
भूयोऽगमत्समं तेन विरूपाक्षो घटोद्भव । यत्रोद्दालेश्वरश्चाऽऽस्ते व्याघ्रवद्गिरिशेखरे ॥२॥
माघासितद्वितीयायां रुद्रकुण्डजलाप्लुतः । अपूपुजद्धि तल्लिङ्गं भक्तिभावेन चाऽर्हणैः ॥३॥
उषित्वा तन्निशायां स पप्रच्छ नेमुनिं पुनः । तल्लिङ्गस्य च माहात्म्यं नत्वा च दण्डवद् भुवि ॥४॥

### विरूपाक्ष उवाच

मुनीश ! त्वत्प्रसादाच्च नृत्येश्वरप्रसंशनम् । तीर्थानाञ्च तन्महत्त्वञ्च श्रुतं विस्मयकारकम्[2] ॥५॥
भूयोऽहं श्रोतुमिच्छामि चैतल्लिङ्गप्रशंसनम् । केन प्रकाशितं पूर्वं वदैतन्मुनिपुङ्गव ॥६॥

### नेमुनिरुवाच

उद्दालमुनिना पूर्वं स्थापितमेतदैश्वरम् । वैशाखस्यैव सङ्क्रान्त्यां विधिनाऽत्र मुदा द्विज ॥७॥
अर्चति स्म मुनिश्रेष्ठ चैतल्लिङ्गं तदर्हणैः । भक्त्या च विधिवद्वीरः स मुक्तश्चाऽत्र शाङ्करे ॥८॥
उद्दालमुनिना पूर्वं स्थापितमेतदैश्वरम् ॥९॥
शृणु वै तस्य माहात्म्यं मुक्तः स्थूलोदरः पुरा । आसीत्कश्यपपुत्रो हि नाम्ना स्थूलोदरः स्मृतः ॥१०॥
बलिष्ठः सर्वदैत्येभ्यो नागणयत् सुरासुरान् । अनिवेद्य स्वयं भुक्तं मिष्टान्नं तेन सर्वदा ॥११॥

---

## अध्याय - १०६

### उद्दालकेश्वर शिवलिङ्गको महिमा

कार्तिक स्वामीले भन्नुभयो - एकपटक ब्रह्मतीर्थमा स्नान गरेर त्यहाँको लिङ्गको पूजा गर्नाले ती विरूपाक्ष अत्यन्त आनन्दित भएर पापबाट मुक्त भए र दिव्यदृष्टि पाए । हे अगस्त्य मुनि ! त्यसपछि विरूपाक्ष नेमुनिलाई साथमा लिएर व्याघ्रवान् पर्वतको शिखरमा रहेको उद्दालकेश्वर भगवान्को नजिकै गए । माघकृष्ण द्वितीयाका दिन रुद्रकुण्डको जलमा स्नान गरेर विभिन्न पूजासामग्रीद्वारा उनले त्यस लिङ्गको पूजा गरे । राति जाग्राम बसेर उनले नेमुनिसित फेरि भूमिमा दण्डवत् लम्पसार पर्दै नमस्कार गरेर त्यस लिङ्गको महत्त्व सोधे ॥१-४॥

विरूपाक्षले भने - हे मुनीश्वर ! हजुरको कृपाबाट मैले नृत्येश्वर भगवान्को र तीर्थको अत्यन्त अद्भुत महिमा सुनें, अब म यस लिङ्गको माहात्म्य सुन्न चाहन्छु । यसलाई अघि कसले प्रकाशित गर्‍यो ? हे मुनिश्रेष्ठ ! यो मलाई बताउनुहोस् ॥५ -६॥

नेमुनिले भन्नुभयो - हे विरूपाक्ष ! अघि उद्दाल नाम गरेका ऋषिले वैशाख सङ्क्रान्तिका दिन हर्षोल्लासका साथ यस ठाउँमा भगवान् शङ्करको यो लिङ्ग स्थापना गरेका थिए । ती मुनिश्रेष्ठले पूजासामग्री लिएर भक्तिपूर्वक यस लिङ्गको आराधना गरे । त्यसैले गर्दा ती वीर शङ्करमा गएर लीन भई मुक्त भए । अघि उद्दाल नाम गरेका ऋषिले यी भगवान्लाई स्थापना गरेका हुन् । तिनको माहात्म्य सुन । अघि उनको आराधना गरेर स्थूलोदर नाम गरेका व्यक्ति मुक्त भएका थिए ॥७-९½॥

स्थूलोदर नामले प्रसिद्ध कश्यपको छोरो थियो । ऊ सबै दैत्यभन्दा बलियो थियो । देवता र राक्षसहरूलाई ऊ गन्दैनथ्यो । आफ्ना मान्यजन र नोकरहरूलाई समेत नदिईकन ऊ मीठो खाने कुरा सधैँ खाने गर्थ्यो । त्यसैले ऊ कुक्षिम्भर अर्थात् आफ्नो मात्र पेट पाल्ने भयो ॥१०-११॥

---

१. ......निष्पापश्चाभूद्दिव्येक्षणः, इति न.सं.पु.पाठः ॥ २. तथैवञ्च ह्यत्यद्भुतं श्रुतं विभो, इति न.सं.पु.पाठः ।

ज्येष्ठेभ्यश्चैव भृत्येभ्यस्तस्मात्कुक्षिम्भरोऽभवत्। तांस्तान्प्रलोभयन्नित्यं मिष्टान्नं भुक्तवान्सदा ॥१२॥
स्थूलोदरोऽभवत्सोऽपि बलीयांश्च कदाचन[३]। ततो मानसजैर्दोषैः कृशाङ्गः सोऽभवत्पुनः ॥१३॥
स्थूलोदरः शुष्कतनु[४]र्व्याधिपीडितविग्रहः। नारदस्य मुखाच्छ्रुत्वा सोऽत्रैव प्राप्तवान् द्विज ॥१४॥
गोपालेश्वरकामोऽपि प्रेक्ष्यैनमादरान्मुदा[५]। पूजयंश्च मुदा भक्त्या चोद्दालेशं समर्हणैः ॥१५॥
तपश्चकार चाऽत्राऽसौ द्वादशाब्दं भृशं द्विज। ततो महाबली दैत्यः सोऽभूत्[६] पूर्वचतुर्गुणः ॥१६॥
आत्मना स तदा मेने वरं लब्ध्वा कृतार्थताम्। लब्ध्वा तस्माद्वरं दैत्यः स्थूलोदरो महाबली ॥१७॥
पूर्ववैरञ्च संस्मृत्य हतान् दैत्यांश्च विष्णुना। विष्णुमावाहयच्चाऽत्र योद्धुं तेन समं तदा ॥१८॥
पूर्ववैररुषाविष्टः संस्मृत्य दानवान् हतान्[७]। युयोध विष्णुना सार्द्धं स्थूलोदरो भृशं द्विज ॥१९॥
तोमरैः परिघैर्बाणैः प्राहरत् स पुनः पुनः[८]। पूर्ववैरं स संस्मृत्य चाकर्ण्यमुद्धतैः शरैः ॥२०॥
गोपालस्याऽन्तमुद्दिश्य जघान लघुहस्तवान्। निचखान ह्युरोदेशे गोपालस्य सदा नवैः ॥२१॥
भल्लैस्तीक्ष्णमुखैर्बाणैर्जलौकाभिरिवाऽङ्गके। शार्ङ्गञ्चैव समुत्सृज्य सुदर्शनं समाददे ॥२२॥
गोपालश्च रुषाऽऽविष्टस्तदन्तिकं समाचरत्। गोपालोऽसौ ततः शीघ्रं समक्षिपत्सुदर्शनम् ॥२३॥
तस्य ग्रीवां समुद्दिश्य सूर्यप्रतिमतैजसम्। विद्योतयन् दिशः सर्वाः समागतं सुदर्शनम् ॥२४॥
उद्दालेशस्तमुत्प्रेक्ष्य पाशुपतास्त्रमक्षिपत्। ततः पाशुपतास्त्रं तं रक्षति स्म समन्ततः ॥२५॥
स्थूलोदरान्तिकं दिक्षु परिभ्रम्य द्रुतं मुहुः। तदस्त्रसंवृते चाऽभून्निष्प्रयत्नं सुदर्शनम् ॥२६॥
प्रत्यागतं हरेः पाणौ त्यक्त्वा स्थूलोदरं द्विज। घर्मः सुस्राव देहाच्च विष्णोः श्रमातुरस्य च ॥२७॥
उवाह पतति तस्मिन् नदीभूता सुनिर्मला। आविर्भूतस्ततो रुद्रः प्रत्यागते सुदर्शने ॥२८॥
व्याचष्टे वचनं तस्मै वरं दातुं तदा विभुः।

---

मान्यजन तथा भृत्यहरूलाई लोभ देखाएर ऊ सधैँ मिठाइ खाने गर्थ्यो। त्यसैले गर्दा उसको पेट अत्यन्त ठूलो भयो। केही समय बलियो मोटेघाटे देखिए पनि त्यसपछि भने मनमा भएका दोषले गर्दा ऊ क्रमशः दुब्लाउँदै गयो। पेट ठूलो भए तापनि रोगले गर्दा शरीर सुकेर गयो। नारदको वचन सुनेर त्यसै ठाउँमा आयो ॥१२-१४॥

हे विरूपाक्ष ! ऊ गोपालेश्वर जाने इच्छा हुँदाहुँदै पनि त्यसले त्यहाँ भक्तिपूर्वक विभिन्न पूजासामग्रीहरू लिएर उद्दारेश्वर भगवान्को पूजा गर्‍यो। बाह्र वर्षसम्म यसले खूबसित तपस्या गर्‍यो। त्यसपछि त्यो दैत्य पहिलेभन्दा चार गुणा बलियो भयो। त्यसले वर प्राप्त गरेर आफूलाई कृतार्थ भएको ठान्यो। उद्दालेश्वर भगवान्‌बाट वर प्राप्त गरेर महाबली स्थूलोदर त्यस राक्षसले विष्णुद्वारा मारिएका दैत्य र पुरानो वैरभावलाई सम्झियो। पुरानो वैरभावले युक्त भएको त्यस दानवले अघि दानवलाई मार्ने विष्णुसित लड्नका लागि विष्णुलाई यसै ठाउँमा आवाहन गर्‍यो ॥१५-१८॥

हे विरूपाक्ष ! पुराने इबी र रीसको आवेगमा परेको त्यो स्थूलोदर नाम गरेको दैत्यले भाला, फर्सा र बाणले बारम्बार हिर्काएर विष्णुसित लड्न थाल्यो। पुरानो वैरभावलाई सम्झेर त्यस दैत्यले कानसम्म बाण खिंचेर छिट्टेछिट्टे हात चलाई भगवान् विष्णुको हृदय ताकेर हान्यो। त्यसले भगवान् विष्णुको छातीमा भर्खर उद्याएका भाला र तीखा बाणहरू शरीरमा जुकाझैँ गरी छाड्यो ॥१९-२१॥

भगवान् विष्णुले पनि रिसाएर शार्ङ्ग धनु छाड्नुभयो र उसलाई लक्ष्य गरेर फ्याँक्न सुदर्शन चक्र लिनुभयो। भगवान् विष्णुले तुरुन्त त्यसको घाँटी ताकेर सूर्यजस्तै तेज भएको सुदर्शन चक्र छोड्नुभयो। त्यसपछि सबै दिशालाई उज्यालो पार्दै आउन लागेको सुदर्शनलाई देखेर उद्दालेश्वर भगवान्ले त्यसमाथि पाशुपतास्त्र प्रहार गर्नुभयो। त्यसपछि पाशुपतास्त्रले बारम्बार घुमेर चारैतिरबाट स्थूलोदरको रक्षा गर्‍यो। त्यस अस्त्रको अगाडि सुदर्शन चक्र निष्फल भयो। हे विरूपाक्ष ! त्यसपछि स्थूलोदरलाई छोडेर सुदर्शन चक्र भगवान्को हातमा आयो ॥२२-२६॥

परिश्रमले थाकेका विष्णुको शरीरबाट पसिना झर्‍यो। त्यसै पसिनाबाट सफा जल भएकी नदी बगिन्। सुदर्शन गएपछि भगवान् शङ्कर प्रकट हुनुभयो र त्यसलाई वर दिनका निमित्त उहाँले भन्नुभयो ॥२७-२८½॥

---

३. कञ्चिकालं बलीयसः, इति न.सं.पु.पाठः।
४. स्थूलोदरतनुः शुष्कः, इति न.सं.पु.पाठः।
५. प्रेक्ष्यैनमाद्रयन्मुदा, इति न.सं.पु.पाठः।
६. महाबलो दैत्यश्चाभूत्, इति न.सं.पु.पाठः।
७. प्राग्घातदानवेन च, इति न.सं.पु.पाठः।
८. प्रहारयत्पुनः पुनः, इति न.सं.पु.पाठः।

उद्दालेश्वर उवाच

स्थूलोदर वरं दास्ये शृणु तच्च वदामि ते ॥२९॥
त्वया चिरं यतस्तप्तं दीर्घञ्चानन्यचेतसा[९] । अद्यप्रभृति दैत्यानां सुराणाञ्च तथैव हि ॥३०॥
यक्षोरगपिशाचानां श्रेष्ठो भवामरो भव । मम पार्श्वचरो नित्यं भव प्रमथनायकः ॥३१॥
स्वेच्छागतिः पराबाधो सेवसे मां विरन्तरम्[१०] ।

नेमुनिरुवाच

इत्युक्त्वाऽन्तर्दधे रुद्रो विमानमानयंस्तदा ॥३२॥
आययुः शिवदूता वै तदाज्ञयेह सांप्रतम् । ततो देवगणा व्योम्नो ववृषुः[११] पुष्पसन्ततिम् ॥३३॥
प्रणेदुर्गीतवाद्यानि भेरीमृदङ्गझर्झरैः । ते तमास्थाय तद्याने निन्युः शिवपुरं परम् ॥३४॥
गीतवाद्यमहोल्लासै रुद्रकन्याप्रसेवितम् । स्थूलोदरो द्विजाद्यापि रुद्रस्यानुचरोऽभवत् ॥३५॥
सर्वभयं परित्यज्य रुद्रवद्विचरन्सदा । एतत्ते वर्णितं विप्र ! चोद्दालेशप्रशंसनम् ॥३६॥
संस्थापितोऽपि रुद्रोऽसौ स्वयम्भूवत्पराक्रमी । भूयो गच्छ विरूपाक्ष ! चोत्तरस्यामतो[१२] दिशि ॥३७॥
गोपालेशः शिवो यत्र पश्चिमे वाग्वतीतटे ।
यज्ञाभिधाने ऋतुजे हि कुण्डे स्नात्वाऽऽशु लिङ्गञ्च समर्चयेशम् ।
सौभाग्यकामो बहुकष्टलभ्यं लभस्व भाग्यञ्च विरूपनेत्र ॥३८॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायामुद्दालकेश्वरमाहात्म्यं नाम षडुत्तरशततमोऽध्यायः ॥१०६॥

---

उद्दालकेश्वरले भन्नुभयो – हे स्थूलोदर ! म तिमीलाई वर दिन्छु, सुन – किनभने तिमीले मलाई एकचित्त भएर धेरै समयसम्म तपस्या गरेका छौ । आजदेखि तिमी दैत्य, देवता, यक्ष, सर्प र पिशाचहरूभन्दा पनि श्रेष्ठ बन, अमर बन । मेरो सधैं आसपासमा बस र प्रमथगणका नायक बन । इच्छा लागेको ठाउँमा तिमी जान सक्नेछौ, तिमीलाई कुनै पीडा हुनेछैन । हरबखत मेरो साथमा रहन पाउनेछौ ॥२९–३१॥

नेमुनिले भन्नुभयो – यति भनेर भगवान् शङ्कर अन्तर्धान हुनुभयो । शिवजीका दूतहरू भगवान् शङ्करको निर्देशन अनुसार विमान लिएर त्यहाँ आए । त्यसपछि देवताहरूले आकाशबाट फूलको वर्षा गरे, गीत गाए, कर्नाल, मादल, झ्याँझर आदि बाजाहरू बजाए । रुद्रका कन्याहरूद्वारा सुसेवित त्यस यानमा राखेर गीत, बाजा र उल्लासका साथ शिवका दूतहरूले उसलाई शिवपुरमा लगे ॥३४॥ आज स्थूलोदर सम्पूर्ण डरबाट मुक्त भएर भगवान् शङ्करजस्तै गरी हिँड्छ र भगवान् शङ्करको सेवक भएको छ ॥३२–३५॥

हे विरूपाक्ष ! मैले तिमीलाई उद्दालेश्वरको माहात्म्य बताएँ । यी स्थापना गरिएका भगवान् रुद्र पनि आफैँउत्पन्न भएका भगवान् रुद्रजस्तै पराक्रमी छन् । हे विरूपाक्ष ! अब जहाँ वाग्मतीको तटमा भगवान् गोपालेश्वर शिवजी रहनुभएको छ उत्तर दिशामा पर्ने त्यस ठाउँमा तिमी जाऊ । हे विरूपाक्ष ! यज्ञबाट उत्पन्न भएको यज्ञकुण्डमा स्नान गरेर फूर्तिसँग लिङ्गस्वरूप भएका महादेवलाई राम्ररी पूजा गर । सौभाग्यको चाहना राख्ने तिमीले धेरै परिश्रमबाट मात्र पाउन सकिने इच्छाअनुरूपको सौभाग्य अवश्य पाउनेछौ ॥३६–३८॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा उद्दालेश्वरको माहात्म्यनामक एकसय छैठौं अध्याय पूरा भयो ।

---

९. भूत्वा चानन्यमानस, इति न.सं.पु.पाठः ।
१०. मां सेवसि सन्ततम्, इति न.सं.पु.पाठः ।
११. ववर्षुः, इति न.सं.पु.पाठः ।
१२. चातो हि चोत्तरे, इति न.सं.पु.पाठः ।

# सप्ताधिकशततमोऽध्यायः

गोपालव्याघ्रतीर्थ–गोपालेश्वरशिवलिङ्गयोर्महिमा

स्कन्द उवाच

रुद्रकुण्डे ततः स्नात्वा विरूपाक्षो घटोद्भव। उदारधीरभूद् भूयो महाबलपराक्रमः ॥१॥
भूयोऽगमद्विरूपाक्ष ऋषिणाऽऽशु समन्ततः। गोपालाख्यः शिवो यत्र मर्कटाचलशेखरे ॥२॥
यज्ञकुण्डे पुनः स्नात्वा गोपालेशमपूपुजत्। प्रोषितवान्निशामेकां निराहारो जितेन्द्रियः ॥३॥
गोपालाख्ये महातीर्थे प्राक् सस्नौ स विरूपदृक्। ततोऽपूपुजद्धि तल्लिङ्गं तृतीयायां तपःसिते[1] ॥४॥
ततोऽपृच्छन्मुनिं विप्रो माहात्म्यं फलमेव च[2]। तीर्थयोश्चैव लिङ्गस्य भक्तिपूर्वं घटोद्भव ॥५॥

विरूपाक्ष उवाच

भगवन्मुनिशार्दूल ! ज्ञानचक्षुःप्रदायक। भूयोऽहं श्रोतुमिच्छामि चैतद् ब्रह्मविदांवर ॥६॥
कथमेतत्समुद्भूतं लिङ्गं त्रिदशपूजितम्। केन प्रकाशितं पूर्वं किं फलं पूजनाद् भवेत्[3] ॥७॥
तीर्थस्य चैव माहात्म्यं कुण्डस्य च विशेषतः। त्वद्दासायाऽधुना धीमन्तत्सर्वं वद मे विभो ॥८॥

नेमुनिरुवाच

हत्वा च दानवान् पूर्वं विष्णुः किल्विषवानभूत्। अनागसस्तथा काँश्चिद्धत्वा च योद्धुमागतान् ॥९॥
तद्दूषणप्रशान्त्यर्थं तीर्थयात्राञ्च सोऽकरोत्। परिभ्रम्य रसां सर्वामत्रैव प्राप्तवान् विभुः ॥१०॥
गोपदी च नदी पुण्या वाग्वती सुरपूजिता। तयोश्च सङ्गमे पुण्ये गोपालतीर्थमीरितम् ॥११॥

---

अध्याय – १०७

गोपालव्याघ्रतीर्थ र गोपालेश्वर शिवलिङ्गको महिमा

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! त्यसपछि विरूपाक्षले रुद्रकुण्डमा स्नान गरेकाले उनी बुद्धिमान्, बलवान् र ठूलो पराक्रमशाली बने। त्यसपछि विरूपाक्ष नेमुनिलाई साथमा लिई गोपाल नाम गरेका शिवजी बस्नुभएको मर्कटचलको शिखरमा गए। अनि उनले यज्ञकुण्डमा स्नान गरेर गोपालेश्वर भगवान्को पूजा गरेर इन्द्रियविजयी भई भोकै बसेर एक रात बिताए। पहिले विरूपाक्षले गोपालेश्वर नामक महातीर्थमा स्नान गरे। त्यसपछि उनले माघशुक्ल तृतीयाका दिन त्यस लिङ्गको पूजा गरे। हे अगस्त्य मुनि ! त्यसपछि भक्तिपूर्वक ती ब्राह्मणले नक्र अर्थात् नेमुनिसँग त्यस तीर्थ र लिङ्गको माहात्म्यबारे प्रश्न गरे ॥१–५॥

विरूपाक्षले भने – ज्ञानचक्षु दिने हे मुनिश्रेष्ठ ! हे ब्रह्मवेत्ता ! हजुरसित म फेरि यो माहात्म्य सुन्न चाहन्छु। देवताद्वारा पूजित यस लिङ्गको उत्पत्ति कसरी भयो ? सर्वप्रथम कसले यसलाई प्रकाशमा ल्यायो ? यसको पूजाबाट के फल प्राप्त हुन्छ ? हे प्रभु ! हे बुद्धिमान् मुनि ! यो तीर्थ र विशेष गरी कुण्डको माहात्म्य हजुरको सेवक मलाई सबै बताइदिनुहोस् ॥६–८॥

नेमुनिले भन्नुभयो – अघि युद्धमा अग्रसर नभएका निरपराध केही दानवलाई मारेर भगवान् विष्णु पापी बन्नुभएको थियो। त्यही दोषलाई हटाउन भगवान् विष्णुले तीर्थयात्रा गर्नुभयो। त्यसै क्रममा सम्पूर्ण पृथ्वी घुमेर भगवान् विष्णु यसै ठाउँमा आइपुग्नुभयो। पवित्र गोपदी नदी र देवताद्वारा पूजित वाग्मती नदीको पवित्र सङ्गममा जुन तीर्थ छ त्यसलाई गोपालतीर्थ भनिएको छ ॥९–११॥

---

१. तपःसिततृतीयके, इति न.सं.पु.पाठः। २. नक्रमेव च, इति न.सं.पु.पाठः। ३. लभेत्, इति न.सं.पु.पाठः।

ददर्श तत्र विष्णुस्तां कामधेनुं सुरार्चिताम्। तत्र स्नात्वा व्रजन्तीं वै द्रुतं[४] चित्राद्रिशेखरे ॥१२॥
विष्णुस्तत्र पुनः सस्नौ विशुद्धात्मा च सन्ततम्। अत्राऽगमत् समारुह्य चैनामन्वेषयन् हि ताम् ॥१३॥
भूयोऽपश्यच्च तां विष्णुः स्रवन्तीं क्षीरमादरात्। इतस्ततस्तदा भूमौ धारापातमिवाऽम्बुदः ॥१४॥
भाद्रकृष्णचर्तुदश्यां प्रस्राव्य क्षीरमत्र सा। ददर्श चाऽगतं विष्णुं स्नात्वा च त्वरितं तदा ॥१५॥
सापि तिरोदधे व्योम्नि विष्णुं प्रेक्ष्य च साम्प्रतम्। व्याजहार पुनर्विष्णुः प्रेक्ष्य व्योम्नि गतां हि ताम् ॥१६॥
क्व यास्यसि वदार्ये मे कस्माद्वाऽऽशु पलायसे। त्वाञ्च द्रष्टुमिहाऽऽयातो यतः पूतो भवाम्यहम् ॥१७॥

कामधेनुरुवाच

मां गां पालय भो विष्णो सिद्धकामो भविष्यसि। तस्याश्च पालनाल्लोके गोपाल इति विश्रुतः ॥१८॥
तत्रैव दृश्यतां लिङ्गं मूर्तिञ्चैवावयोः शिवाम्। खनित्वा च मृदं विष्णो लोकेप्सितफलप्रदम् ॥१९॥
प्रतीच्यां सम्मतं स्थानं तव तत्र भविष्यति। सेवनाच्चैव लिङ्गस्य[५] लब्ध्वा वरं यदीप्सितम् ॥२०॥
सेविष्यसे यतो लिङ्गं तव नाम्ना भविष्यति। गोपालेश्वरमित्याख्यं लोकोऽनिशं वदिष्यति ॥२१॥

नेमुनिरुवाच

आकर्ण्य तद्वचो विष्णुश्चखान मृत्तिकां तदा। अपश्यत्स महल्लिङ्गं सद्योभूतं महाप्रभुम् ॥२२॥
आनर्च विधिवल्लिङ्गं विष्णुर्भक्तिपुरस्सरम्। तुष्टाव सहसा रुद्रं परिक्रम्य पुनः पुनः ॥२३॥

---

भगवान् विष्णुले देवताद्वारा पूजित कामधेनुलाई त्यस तीर्थमा स्नान गरेर चित्रपर्वततिर जान लागेको देख्नुभयो। भगवान् विष्णुले फेरि त्यहाँ बारम्बार स्नान गर्नुभयो र आत्मालाई शुद्ध पार्नुभयो। त्यसपछि उहाँ ती कामधेनु गाईलाई खोज्दै चित्रपर्वतमा चढेर यहाँ आउनुभयो। जसरी मेघले मुसलधारे पानी वर्षा गर्छ त्यसरी नै यताउति दूध झार्दै हिँडेकी ती गाईलाई श्रद्धासित भगवान् विष्णुले हेर्नुभयो। भाद्रकृष्ण चतुर्दशीका दिन दूध चुहाउन लागेकी कामधेनुले स्नान गरेर छिटो-छिटो आउन लागेका विष्णुलाई देखिन् ॥१२-१५॥

विष्णुलाई देख्नासाथ कामधेनु पनि तुरुन्त आकाशमा विलीन भइन्। विष्णुले पनि आकाशमा जान लागेकी कामधेनुलाई देखेर भन्नुभयो। हे आर्ये ! तिमी कता जाँदैछ्यौ ? मलाई भन। के कारणले छिटो-छिटो भाग्दैछ्यौ ? पवित्र हुन्छु भन्ने भावनाले म तिम्रो दर्शन गर्न आएको छु ॥१६-१७॥

कामधेनुले भनिन्- हे विष्णु ! गाईको पालना गर्नुहोस्। गाईलाई पालना गर्नुभयो भने तपाईं संसारमा गोपाल नामले प्रसिद्ध हुनुहुनेछ। हे विष्णु ! त्यहाँ रहेको माटोलाई खन्नुहोस्। त्यसपछि ईप्सित फल दिन सक्ने कल्याणकारी शिवजीको लिङ्ग र मेरो मूर्ति भेट्नुहुनेछ। अनि त्यस लिङ्गको सेवा गर्नुहोस्, आफूले चाहेको वर पाउनुहुनेछ। त्यसदेखि पश्चिमपट्टि तपाईंको निवासस्थल हुनेछ। तपाईंले शिवलिङ्गको आराधना गरेपछि यस शिवलिङ्गलाई दुनियाँले सधैं गोपालेश्वर नामले पुकार्नेछन् ॥१८-२१॥

नेमुनिले भन्नुभयो- त्यो कुरा सुनेर विष्णुले त्यहाँको माटो खन्नुभयो। खन्दै जाँदा त्यहाँबाट अत्यन्त तेजस्वी ठूलो शिवजीको लिङ्ग भेटियो। त्यसपछि विष्णुले भक्तिका साथ विधिपूर्वक त्यस लिङ्गको पूजा गर्नुभयो र बारम्बार परिक्रमा गर्दै अनेक तरहले स्तुति गर्नुभयो ॥२२ -२३॥

---

४. एवम्, इति न.सं.पु.पाठः।

५. सेवयंश्चैव तल्लिङ्गम्, इति न.सं.पु.पाठः।

विष्णुरुवाच

नमो रुद्राय रौद्राय रौद्रैनसो विनाशिने। जगतां कालरूपाय कालिकापतये नमः ॥२४॥
संवर्त्तकाय कालाय कालाग्निभीषणाय च। सङ्कर्षिण्यम्बिके देवि ! कालशक्ते नमोऽस्तु ते ॥२५॥
प्रपालयंस्तदा तां गां मन्त्रैः पञ्चोपचारकैः। ततो यज्ञञ्चकाराऽसौ रुद्रहेतोर्महोत्सवैः ॥२६॥
अजुहोच्च हविर्वह्नौ[६] तन्मत्रैश्च प्रपूरितम्। आवाहयत्ततो गङ्गां स्नपनाय शिवस्य च ॥२७॥
त्वमिहाऽऽगच्छ हे गङ्गे चेत्युक्त्वा च तदा हरिः। प्रादुर्भूता ततो गङ्गा यज्ञकुण्डाच्छिवान्तिके ॥२८॥
यस्माच्च यज्ञगङ्गेति प्रख्याता भुवि दुर्ल्लभा। भूयोऽपूजत्तदा विष्णुरेतल्लिङ्गञ्च तज्जलैः ॥२९॥
प्रादुर्भूतः ततो रुद्रः[७] कालानलसमप्रभः। सर्वायुधसमुपेतः सर्वलोकाभयप्रदः ॥३०॥
दधानः सव्यके शक्तिं कालसङ्कर्षिणीं पराम्। व्यक्तशक्तियुतो रुद्र उवाच श्रीहरिं खलु ॥३१॥

गोपालेश्वर उवाच

तुष्टोऽहं ते हरे भक्त्या चैतज्जलैर्विशेषतः। अपीयमावयोर्मूर्त्तिस्तव नाम्ना भविष्यति ॥३२॥
गोपालेश्वर इत्यार्य यो वदिष्यति सन्ततम्। विमुक्तः सर्वपापेभ्यो मल्लोकं स गमिष्यति ॥३३॥
पश्यति य इहाऽऽगत्य त्वन्मूर्त्यां मिश्रितं हि माम्। तत्ततनुं परित्यज्य प्रमथनायको भवेत् ॥३४॥
गच्छ गोपाल ! मद्वाक्यात्प्रतीच्याञ्चैव दिश्यतः। ऋक्षवत्पर्वतस्याधः तत्र तिष्ठ हरे चिरम् ॥३५॥

---

विष्णुले भन्नुभयो – डरलाग्दा पापहरूलाई पनि नाश गर्ने भयानक स्वरूप भएका रुद्रलाई नमस्कार छ। संसारका काल भएका कालिकाका पतिलाई नमस्कार छ। कालाग्निजस्तै डरलाग्दा प्रलयकालीन काललाई नमस्कार छ। भक्तहरूको दुःखलाई खिच्ने हे अम्बिका देवी ! कालकी शक्ति भएकी हजुरलाई नमस्कार छ। त्यसपछि भगवान् विष्णुले ती गाई र पृथ्वीको रक्षा गर्नुभयो। अनेक किसिमका मन्त्र उच्चारण गर्दै उहाँले पञ्चोपचार विधिले शिवजीको पूजा गर्नुभयो। शिवजीलाई प्रसन्न बनाउन ठूलो उत्सव गर्दै यज्ञ गर्नुभयो। उहाँले मन्त्रोच्चारणपूर्वक अग्निमा हवन गर्नुभयो। त्यसपछि शिवजीलाई स्नान गराउनका लागि गङ्गाजीको आवाहन गर्नुभयो ॥२४-२७॥

हे गङ्गे ! हजुर यहाँ आउनुहोस् भनेर भगवान् विष्णुले भनेपछि यज्ञकुण्डबाट शिवजीको नजिकै गङ्गा उत्पन्न हुनुभयो।यसैले पृथ्वीमा दुर्लभ ती गङ्गा यज्ञगङ्गाको नामले प्रसिद्ध हुनुभयो। फेरि भगवान् विष्णुले यज्ञगङ्गाको जलले यस लिङ्गको पूजा गर्नुभयो। त्यसपछि सम्पूर्ण हतियारले सुसज्जित भएर सम्पूर्ण प्राणीहरूको मनमा भय उत्पन्न गर्दै प्रलयकालीन अग्निजस्तो कान्ति भएका भगवान् रुद्र प्रकट हुनुभयो। बायाँतिर कालसङ्कर्षिणी (काललाई पनि खिचेर ल्याउन सक्ने क्षमता भएकी) शक्तिलाई धारण गरेर प्रकट हुनुभएका भगवान् शङ्करले विष्णुलाई भन्नुभयो ॥२८-३१॥

गोपालेश्वरले भन्नुभयो – हे विष्णु ! तिम्रो भक्ति र विशेष गरी यो तीर्थको जलले गर्दा म अत्यन्त प्रसन्न भएँ, हामी दुबैको यो मूर्ति तिम्रो नाउँबाट प्रसिद्ध हुनेछ। हे आर्य ! जसले बारम्बार गोपालेश्वर भन्नेछ, त्यो व्यक्ति सम्पूर्ण पापबाट मुक्त भएर मेरो लोकमा जानेछ। जो मानिसहरूले यहाँ आएर तपाईंको मूर्तिमा एकाकार भएको मेरो मूर्तिको दर्शन गर्नेछन्, तिनीहरूले आ-आफ्नो शरीर त्यागेपछि प्रमथगणका नायक हुन पाउनेछन्। हे गोपाल ! हे कृष्ण ! मेरो निर्देशन अनुसार तपाईं यहाँबाट पश्चिमतिर रहेको ऋक्षवान् पर्वतको फेदीमा गएर धेरै समयसम्म बस्नुहोस् ॥३२-३५॥

---

६. अजुहोद्धविषं वह्नौ, इति न.सं.पु.पाठः।

७. तत आविर्भवो रुद्रः, इति न.सं.पु.पाठः।

नेमुनिरुवाच

समाकर्ण्य वचो रुद्राद् गोपालस्त्वरितं ययौ। शिखरिण्युद्भवो यत्र तस्थौ तत्र मुदाऽन्वितः ॥३६॥
या स्वपादार्घ्यसम्भूता विष्णुस्मृताद्रिसम्भवा। सङ्गमे[८] विष्णुतीर्थाख्ये शिखरिणीसुगङ्गयोः ॥३७॥
हव्यकव्यार्चनं दानमक्षयं फलमश्नुते। देवासुरर्षिभिः सिद्धैर्नित्यमुपास्यते हरिः ॥३८॥
विष्णुतीर्थे च यः स्नात्वा विष्णुं गोपालरूपतः। प्रपश्यति मुदा भक्त्या विष्णुलोकं स गच्छति ॥३९॥
सङ्क्रान्त्यां पूर्णिमायां वा द्वादश्याञ्च विशेषतः। स्नातको विष्णुभक्तश्च विष्णुलोकं व्रजेत्परम् ॥४०॥
भूयः शृणु प्रवक्ष्यामि कश्चिन्मुक्तो द्विजाधमः। स्नात्वा गोपालतीर्थे च गोपालेश्वरदर्शनात् ॥४१॥
पूर्वजन्मविपाकेन सर्वाचारोऽभवद् द्विजः। ब्राह्मणो जातिमात्रेण क्रियाचाण्डालसन्निभः ॥४२॥
लोकैः स्वजातिभिस्त्यक्तः प्राकृतोऽसत्प्रतिग्रहात्। चौरवृत्तिं समासाद्य काञ्चीपुराद्विनिर्ययौ ॥४३॥
वनाद् वनं भ्रमन् देशान्[९] परद्रव्याण्युपाहरन्। अत्रैव प्राप्तवाञ्चौरो विलङ्घ्य पर्वतान् बहून् ॥४४॥
शिखरिणी नदी पुण्या यज्ञगङ्गा च या स्मृता। तयोर्हि सङ्गमे व्याघ्रतीर्थं गोपदीतीरजम्[१०] ॥४५॥
जलं पातुं स तत्रैव तृषार्त्तो गतवान् द्विजः। ज्येष्ठे सितदशम्यां स चौर्येण भ्रमणश्रमः ॥४६॥
जलान्तरं समाविश्य पपौ तोयं यथेप्सितम्। व्याघ्रो ददर्श तञ्चौरं जलमध्ये ह्यधोमुखम् ॥४७॥
उत्पपात ततो व्याघ्रस्तमुद्दिश्य द्रुतं तदा। शनैः शनैर्विनिःसृत्य निकुञ्जाद् वृक्षमूलतः।
पादाभ्याञ्च तन्निपीड्य चाऽधिकोत्पतनाद् बलात् ॥४८॥

---

नेमुनिले भन्नुभयो- भगवान् शङ्करको यस्तो वचन सुनेर विष्णु तुरुन्त जानुभयो र जहाँ नदीको उत्पत्ति भएको थियो, त्यसै ठाउँमा आनन्दसित बस्नुभयो। अघि ब्रह्माले अर्घ्य दिँदा आफ्नो पाउबाट यज्ञगङ्गाबाट पैदा भएकी थिइन्। यज्ञगङ्गा र विष्णुले सम्झना गरेकी शिखरिणी नदीको सङ्गममा विष्णुतीर्थ छ। जसले त्यहाँ देवताका निमित्त होम र पितृलाई सिधादान र पूजा गर्छ त्यसले अक्षय फल पाउँछ। भगवान् विष्णु, देवता, राक्सस, ऋषि र सिद्धका साथमा रहेर सधैँ भगवान् शङ्करको उपासना गर्नुहुन्छ। जसले विष्णुतीर्थमा स्नान गरेर गोपालमूर्ति भगवान् विष्णुको प्रसन्न हुँदै भक्तिपूर्वक दर्शन गर्छ त्यो व्यक्ति विष्णुलोक जान्छ। सङ्क्रान्ति, पूर्णिमा र विशेष गरी द्वादशीका दिन जसले स्नान गर्छ त्यो व्यक्ति विष्णुको भक्त भएर उत्तम विष्णुको लोकमा जान्छ ॥३६-४०॥

फेरि म बताउँछु, सुन- गोपालतीर्थमा स्नान गरेर गोपालेश्वरको दर्शन गर्नाले पहिले कुनै अधम ब्राह्मण पनि मुक्त भएको थियो। पूर्वजन्मको दोषले गर्दा त्यो ब्राह्मण मनपरी आचरण गर्ने, जातिले मात्र ब्राह्मण र कामले चाण्डालजस्तै थियो। पशुजस्तो आचरण गर्दै नराम्रो प्रतिग्रह लिएको हुँदा दाजुभाइले उसलाई आफ्नो समुदायबाट निकालिदिए। चोरीको व्यवसाय अँगालेर त्यो ब्राह्मण काञ्चीपुरबाट बाहिर निस्कियो। त्यो ब्राह्मण विभिन्न वन तथा देशहरू घुम्दै अर्काको सम्पत्ति चोर्दै धेरै पर्वतहरू नाघेर यसै ठाउँमा आइपुग्यो ॥४१-४४॥

शिखरिणी नाम गरेकी पवित्र नदी र यज्ञगङ्गा नामले प्रसिद्ध नदी तथा गोपदी नदीको सङ्गममा व्याघ्रतीर्थ छ। चोरी गर्दै हिँड्दा थकित भएको त्यो ब्राह्मण ज्येष्ठशुक्ल दशमीका दिन तिर्खाले आत्तिँदै पानी पिउनका लागि त्यसै ठाउँमा आइपुग्यो। पानीभित्र पसेर उसले भरपेट पानी खायो। पानीभित्र ऊँधोमुख लगाएर बसेको त्यस चोरलाई बाघले देख्यो। झाडीको रुखको फेदबाट निस्किएर बिस्तारै बिस्तारै त्यो बाघले त्यस ब्राह्मणलाई वेगसित झम्टियो ॥४५-४८॥

---

८. समाजे, इति न.सं.पु.पाठः।
९. भ्रममाणो वनं देशान्, इति न.सं.पु.पाठः।
१०. व्याघ्रो गोपद्या सह विश्रुतः, इति न.सं.पु.पाठः।

गण्डशैले पपाताऽऽशु व्याघ्रशिरो भृशं दृढम्। ग्रावाघाताद्विभेदाऽऽशु व्याघ्रशिरस्तदा द्विज ॥४९॥
तदङ्घ्रिपीडनात्सोऽपि व्यसुर्व्याघ्रोऽपि चाऽत्र तौ। तत्र चौरश्च देहान्ते समुद्भूतो द्विजोत्तमः ॥५०॥
तत्तीर्थे मृत्युमापन्नो विरक्तोऽत्र समागमत्। व्याघ्रो देहान्तरे चाऽपि ह्यभून्नृपोत्तमो द्विज ॥५१॥
विरक्तश्च पुनः सोऽपि राज्यं न्यस्य मुदात्मजे। कोशलं स परित्यज्य चैकाकी निर्ययौ बहिः ॥५२॥
सोऽपि ब्रह्मपुरं त्यक्त्वा विनिर्ययौ सुनिर्जनः। कतिचिद्योजनान्ते च वने तौ मिलितौ पथि ॥५३॥
पप्रच्छतुर्मिथो भद्रं को भवान्को भवानिति। ददौ प्रत्युत्तरं तस्मै कोशलाधिपतिर्ह्यहम् ॥५४॥
ब्रह्मपुरनिवासोऽहं रामशर्मेति वेत्थ माम्। एवं सम्भाष्य भूयस्तौ विरक्तेनैव चेतसा ॥५५॥
राज्यं सुखञ्च गार्हस्थ्यं किं स्यादिति प्रमाणकौ[११]। एवं सम्भाषमाणौ तौ सखित्वेन गतौ वनम् ॥५६॥
परिभ्रम्य महीं तौ च तीर्थमेतत्[१२] समागतौ। सस्नतुस्तौ च तत्तीर्थे गोपालाख्ये विरूपदृक् ॥५७॥
चेतसा सुविरक्तेन ब्राह्मणकोशलाधिपौ। स्नात्वा तत्र मुदा तौ हि चोत्तीर्य त्वरितं जलात् ॥५८॥
प्राकृतं बुबुधाते स्वं स्वस्वजातिं पुनर्द्विज। ततो व्याघ्राख्यतीर्थे तौ स्नातुञ्च जग्मतुः खलु ॥५९॥
स्नात्वा तत्र हि विप्रोऽसौ व्याचष्ट वचनं तदा।

रामशर्मोवाच

अत्राऽहं भवता पूर्वमुत्पात्याशु[१३] विहिंसितः ॥६०॥
व्याघ्ररूपेण राजेन्द्र सत्यमेतद्वदाम्यहम्। अत्रैव मृत्युमापन्नः सुधीमानुद्भवाम्यहम् ॥६१॥
राजदेहं समाश्रित्य ज्ञायते भवता च किम्[१४]।

---

दुईवटा खुट्टाले त्यस ब्राह्मणलाई झापड दिएर खूबसित बलपूर्वक उफ्रिंदा त्यस बलियो बाघको शिर तुरुन्त थुम्कामा पछारिन पुग्यो। हे अगस्त्य मुनि ! ढुङ्गामा बजारिएको हुँदा बाघको शिर तुरुन्त दुई टुक्रा भयो। बाघको झम्टाइले गर्दा त्यो ब्राह्मण पनि मऱ्यो। त्यो चोर मरेपछि अर्को जन्ममा उत्तम ब्राह्मण भएर जन्मियो। त्यसै तीर्थमा मरेको हुँदा ऊ विरक्त हुँदै यहाँ आयो ॥४९-५१॥

हे अगस्त्य मुनि ! त्यो बाघ पनि मरेपछि अर्को जुनीमा कोशलदेशको राजा भयो। पछि विरक्त भई उसले त्यो राज्य खुसीसाथ आफ्नो छोरालाई दियो। त्यसपछि ऊ कोशल देशलाई छोडेर एक्लै बाहिर निस्कियो। त्यो ब्राह्मण पनि ब्रह्मपुर छोडेर एक्लै बाहिर आयो। केही योजन पर गएपछि जङ्गलको बाटोमा ती दुईको भेट भयो। तपाईं को हुनुहुन्छ ? तपाईं को हुनुहुन्छ ? भनेर दुबैले आपसमा कुशल प्रश्न गरे। राजाले म कोशल देशको राजा हुँ भनी त्यसलाई जवाफ दिए। ब्राह्मणले म ब्रह्मपुरमा बस्दछु, मलाई रामशर्मा भनेर बुझ भने ॥५२-५५॥

यस्तै कुरा गर्दै फेरि तिनीहरू विरक्त भएर राज्यसुख, घरजम भनेको केही होइन भन्दै वैराग्यका कुरा गर्दै पृथ्वीमा घुम्दै त्यसै तीर्थमा आइपुगे। हे विरूपाक्ष ! विरक्त भएका ती दुई ब्राह्मणले कोशल देशको त्यस गोपालतीर्थमा स्नान गरे प्रसन्न भएर त्यहाँ स्नान गरी पानीबाट बाहिर निस्किएपछि उनीहरूलाई आ-आफ्नो पूर्वजातिको स्मरण भयो। त्यसपछि ती दुबै व्याघ्रतीर्थमा स्नान गर्न गए। स्नान गरिसकेपछि ब्राह्मणले बाघलाई भन्नलागे ॥५६-६०॥

रामशर्माले भने – पहिले यसै ठाउँमा तपाईंले मलाई बाघको रूप लिएर उफ्रिँदै मार्नुभएको थियो, म साँचो कुरा भन्दैछु। यसै ठाउँमा मरेको हुँदा म बुद्धिमान् भएर जन्मिएँ। तपाईंले राजा भएर जन्मिनुभयो। के यो कुरा तपाईंलाई थाहा छ ? ॥६१-६२॥

---

११. प्रमाणितौ, इति न.सं.पु.पाठः।
१२. ह्येतत्तीर्थम्, इति न.सं.पु.पाठः।
१३. पूर्वुत्पपाशु, इति न.सं.पु.पाठः।
१४. किं त्वयाऽधुना, इति न.सं.पु.पाठः।

कोशलेश उवाच

यदुक्तं भवता सत्यमेवमेव न संशयः ॥६२॥

व्याघ्ररूपं समाश्रित्य मया व्यापादितो भवान् । भूत्वा वैश्यः पुरा चाऽहं मांसं भक्षितवान्यतः ॥६३॥

तद्दोषेण मया व्याघ्रदेहो लब्धः सुकिल्विषः । एवं दैववशाद्विप्र ! भवान् हतः पुरा मया ॥६४॥

क्षमस्व मम चाऽऽगांसि दैवदोषो न गण्यते ।

नेमुनिरुवाच

एवं सम्भाष्य तौ भूयो विरक्तौ चाऽत्र जग्मतुः ॥६५॥

एतद्ददर्शतुर्लिङ्गं चित्रेण मनसा तदा ॥६६॥

अर्चतः स्म मुदा लिङ्गं यज्ञगङ्गाजलैः पुनः । उपोष्य तौ निशामेकां शिवशिवेति प्रोचतुः[१५] ॥६७॥

अष्टम्याञ्च निशीथिन्यां शिवदूताः समाययुः । ते च तौ सादरञ्चाऽत्र ह्यवदन्साधुसाध्विति ॥६८॥

समास्थाय च तौ याने निन्युः शिवपुरं हि ते । उद्धूय चामरैः शुभ्रैर्गीतवाद्यैः प्रसेव्य च ॥६९॥

अलभत द्विजो[१६] मोक्षं सर्वसुखं परात्परम् । सोऽपि नृपोऽभवच्छ्रेष्ठः प्रमथानां पुरोगमः ॥७०॥

एतत्ते वर्णितं लिङ्गं तीर्थानाञ्च प्रशंसनम् । भूयो व्रज प्रतीच्यां त्वं भक्तिभावैर्द्वियोजने ॥७१॥

आस्ते चम्पेश्वरं लिङ्गं वज्रपर्वतशेखरे । ब्रह्मतीर्थे ततः स्नात्वा सम्पूजय तमीश्वरम् ॥७२॥

माहात्म्यमेतत्कथितं मया ते गोपालरुद्रस्य परात्परञ्च ।
तथैव जानीहि पुनर्महत्त्वं[१७] चम्पेश्वरस्याऽऽर्य विरूपनेत्र ॥७३॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां गोपालेश्वरगोपालव्याघ्रतीर्थयोर्माहात्म्यं नाम सप्ताधिकशततमोऽध्यायः ॥१०७॥

---

कोशल देशका राजाले भने – मैले बाघको रूप लिएर तपाईंलाई मारेको हुँ भन्ने तपाईंले जुन कुरा भन्नुभयो, त्यो सत्य हो, यसमा सन्देह छैन। मैले अघि वैश्य भएर धेरै मासु खाएँ। त्यसै दोषले गर्दा पापी बाघको शरीर लिएर म जन्मिएँ। हे ब्राह्मण ! दैवले गर्दा अघि मैले तपाईंलाई मारेँ, मेरा अपराधहरू क्षमा गर्नुहोस्, दैवले गरेका दोषको गणना गर्नुहुँदैन ॥६२–६५॥

नेमुनिले भन्नुभयो – यति भनेर विरक्त स्वभावका ती दुबै हिँडेर यहाँ आए। उनीहरूले आश्चर्यचकित हुँदै यस लिङ्गको दर्शन गरे। प्रसन्न भएर यज्ञगङ्गाको जलले ती दुईले लिङ्गको पूजा गरे। रातभरि शिव–शिव भन्दै जाग्राम बसे। माघशुक्ल अष्टमीको राति शिवका दूतहरू त्यहाँ आए। उनीहरूले ती दुबैलाई सम्मान गर्दै स्यावासी दिए। सेता चमर हम्केर गीत गाउँदै, बाजा बजाउँदै उनीहरूले विमानमा राखेर ती दुबैलाई शिवलोक लगे ॥६६–६९॥

ब्राह्मणले उत्तमभन्दा पनि उत्तम सुखले युक्त भएको मोक्ष पदवी प्राप्त गरे। राजा पनि प्रमथगणका प्रमुख भए। मैले तिमीलाई लिङ्ग र तीर्थको यो माहात्म्य बताएँ। अब तिमी श्रद्धापूर्वक दुई योजन पश्चिमतिर रहेको क्षेत्रमा जाऊ। त्यहाँ वज्रपर्वतको शिखरमा चम्पेश्वर भगवान्‌को लिङ्ग छ। ब्रह्मतीर्थमा स्नान गरेर भगवान् चम्पेश्वरको पूजा गर ॥६९–७२॥

हे विरूपाक्ष ! मैले तिमीलाई गोपालेश्वर भगवान् शङ्करको उत्तमभन्दा पनि उत्तम माहात्म्य बताएँ। चम्पेश्वर भगवान्‌को पनि त्यस्तै माहात्म्य छ भन्ने कुरा बुझ ॥७३॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा गोपालेश्वर गोपालव्याघ्रतीर्थको माहात्म्यनामक एकसय सातौं अध्याय पूरा भयो।

---

१५. वदन्तौ शिवशिवेति च, इति न.सं.पु.पाठः।
१६. अलभद् ब्राह्मणः, इति न.सं.पु.पाठः।
१७. पुनर्माहात्म्यम्, इति न.सं.पु.पाठः।

# अष्टाधिकशततमोऽध्यायः

## ब्रह्मतीर्थचम्पेश्वरयोर्महिमा

स्कन्द उवाच

स्नात्वा तीर्थेष्वसौ विप्रो गोपालेश्वरपूजनात्। पूर्वजातिपरिज्ञानमलभत विकिल्विषः ॥१॥
ततोऽगमद्विरूपाक्ष ऋषिणा तेन वै समम्। तत्तत्कथां समाधाय हृदि चित्रञ्च भावयन् ॥२॥
ब्रह्मतीर्थे स वै स्नात्वा चम्पेश्वरमपूपुजत्। जजाप तन्मनुं धीरः तन्मनस्को घटोद्भव ॥३॥
माघशुक्लस्य पञ्चम्यां लिङ्गमभ्यर्च्य वै निशि। विप्रस्तयोर्माहात्म्यञ्च पप्रच्छ नेमुनिं पुनः[१] ॥४॥

विरूपाक्ष उवाच

मुनीश ! त्वत्प्रसादाच्च गोपालेशप्रशंसनम्। तीर्थानाञ्च तथैवं हि विस्मयदं[२] मया श्रुतम् ॥५॥
भूयोऽहं श्रोतुमिच्छामि चैतल्लिङ्गप्रशंसनम्। केन प्रकाशितं पूर्वं वदैतन्मुनिपुङ्गव ॥६॥

नेमुनिरुवाच

आसीद्बाणासुरः पूर्वमत्र राज्यञ्चकार सः। शोणिताख्या पुरी दिव्या चैतस्यां सुचिरं द्विज ॥७॥
तत्सेवकोऽसुरः कश्चित्सुबाहुर्नाम विश्रुतः। नित्यं पुष्पोपहारञ्च राज्ञे चकार सादरम् ॥८॥
स कदाचिद्दिने चाऽत्र ददर्श चम्पकङ्कुजम्। सकोटरञ्च शाखाढ्यं प्रफुल्लं स्वर्णचम्पकम् ॥९॥
आरुरोह तदा दैत्यस्तद्वृक्षं सहसा द्विज। पुष्पाण्यवचितुं राज्ञे सुबाहुर्बाणवल्लभः ॥१०॥
अवचित्यावचित्यार्याऽस्थापयत्पुष्पभाजने। तदा ह्यसौ च पुष्पाणि आरुरोह तरौ पुनः[३] ॥११॥
पुष्पभाण्डं समुद्धृत्य वृक्षादवततार सः। यावत् स नाऽऽगतो भूमौ पुष्पभाण्डं[४] व्यकम्पत ॥१२॥

---

अध्याय – १०८

## ब्रह्मतीर्थ र चम्पेश्वरको महिमा

कार्तिक स्वामीले भन्नुभयो – विरूपाक्षले तीर्थहरूमा नुहाएर गोपालेश्वरको पूजा गरेको हुँदा यिनलाई पूर्वजन्मको ज्ञान भयो र पापबाट मुक्त भए। त्यसपछि विरूपाक्ष ती–ती कथाहरू मनमा सम्झँदै आश्चर्य मान्दै नेमुनिलाई साथमा लिएर हिँडे। हे अगस्त्य मुनि ! उनले ब्रह्मतीर्थमा स्नान गरेर चम्पेश्वर भगवान्को पूजा गरे। शिवजीमा मन लगाउँदै उहाँको मन्त्र जपे। माघशुक्ल पञ्चमीका दिन लिङ्गको पूजा गरिसकेपछि राति ती विरूपाक्षले नेमुनिलाई फेरि त्यो तीर्थ र लिङ्गको माहात्म्य सोधे ॥१–४॥

विरूपाक्षले भने – हे मुनीश्वर ! हजुरको कृपाबाट मैले गोपालेश्वर तथा ती तीर्थहरूको अद्भुत माहात्म्य सुनें। म फेरि यस लिङ्गको माहात्म्य सुन्न चाहन्छु। हे मुनिश्रेष्ठ ! यस लिङ्गलाई कसले प्रकाशित गरेको थियो ? यो सबै मलाई बताउनुहोस् ॥५–६॥

नेमुनिले भन्नुभयो – अघि बाणासुर नाम गरेको राक्षस थियो। उसले शोणित नाम गरेको दिव्य शहरमा धेरै समयसम्म राज्य गर्‍यो। उसको सेवक सुबाहु नाम गरेको कुनै राक्षस थियो। उसले राजालाई सधैं आदरपूर्वक फूलको उपहार चढाउँथ्यो। कुनै दिन उसले यस ठाउँमा आएर चाँपको रुख देख्यो। टोड्का, हाँगा र पुष्पले भरिपूर्ण चम्पकवृक्ष र सुवर्णमय चम्पकपुष्प पनि देख्यो। हे विरूपाक्ष ! बाणासुरको प्रिय सुबाहु नाम गरेको दैत्य अचानक यहाँ आएर फूल टिप्नका लागि त्यस रुखमा चढ्यो। रुखको हाँगामा चढेर त्यस राक्षसले बारम्बार फूलहरू टिप्दै भाँडामा राख्न थाल्यो। त्यो भाँडो बोकेर रुखबाट तल ओर्लियो। भुईंमा नआइपुग्दै त्यो फूल राखेको भाँडो हल्लियो ॥७–१२॥

---

१. ह्यपृच्छन्नेमुनिं पुनः, इति न.सं.पु.पाठः।
२. अत्यद्भुतम्, इति न.सं.पु.पाठः।
३. वृक्षशाखां रुहत्पुनः, इति न.सं.पु.पाठः।
४. यावन्नावगतो भूमौ पुष्प भाण्डं व्यलोभयत, इति न.सं.पु.पाठः।

तत्पुष्पाणि च सर्वाणि प्राविशन् कोटरे तदा। अमर्षैः पूरितो दैत्यः प्रेक्ष्य पुष्पाणि सर्वदा ॥१३॥
रिक्तहस्तो ह्यसौ नित्यमाययौ भवनं स्वकम्। द्विधा त्रिधा चतुर्धा च पञ्चधा च[५] पुनः पुनः ॥१४॥
एकदा दिवसे दैत्यः प्रेक्ष्य पुष्पाणि कोटरे। दोर्भ्यामुद्धृत्य तद्वृक्षमुच्चखान रुषा भृशम् ॥१५॥
निःक्षिप्य वृक्षकं तत्र लिङ्गोत्तमं ददर्श सः। वृक्षस्य कोटराधःस्थमेतन् मनोहरं परम् ॥१६॥
अव्यक्तं तेजसा लिङ्गं दीपशिखेव सा निशि। दिशो भाभिर्भासयच्च भानुमच्च जगद्यथा ॥१७॥
ततोऽस्पृशत्तदा दैत्यश्चैतल्लिङ्गं सुदर्शनम्। ज्ञानवानभवद् भूयो भक्त्या ननाम तन्मुहुः ॥१८॥
अम्बरादाययुर्दूता रुद्रानुशासनाद् द्रुतम्। कुसुमपाणयश्चात्र समानेतुं तमेव च ॥१९॥
ते तमास्थाय तद्याने निन्युस्तद् शिवसद्गृहम्। वैशाखकृष्णपक्षस्य चतुर्दश्याञ्च तद्दिने ॥२०॥
सिषेविरे[६] गणा रौद्राः संवृष्य पुष्पसन्ततिम्। गीतवाद्यप्रमोदैस्तं मृदङ्गतालझर्झरैः ॥२१॥
सैष रुद्रगणश्रेष्ठश्चाऽभूद् भूयो विरूपदृक्। सुबाहुश्च सदेहोऽसौ रुद्रस्यानुचरोऽनिशम् ॥२२॥
भूयो वक्ष्यामि माहात्म्यं ब्रह्मतीर्थस्य वै शृणु। एतस्य च विशेषेण पुराऽभवद्यथा द्विज ॥२३॥
आसीद्विप्रः पुरा वत्स ! कौत्सुको नाम विश्रुतः। सर्वाङ्गकुष्ठवांश्चाभूत्पुराकृतविपाकतः ॥२४॥
अगम्यागमनात्पूर्वं कुष्ठरोगेण विप्लुतः। गुदशिश्नस्फुट्यर्तोऽभूत्पत्न्याः सख्याश्च मैथुनात् ॥२५॥
क्वचिद्विप्रमुखाच्छ्रुत्वा तीर्थाटनं द्विजोऽकरोत्। अगमद्दिशि कौबेर्यां नेपालं गन्तुमीप्सया ॥२६॥
स्नातुञ्च वाग्वतीतीर्थे कौत्सुकोऽसौ शनैः शनैः। अत्रैव प्राप्तवान् विप्रः शैथिल्यगमनः पुनः ॥२७॥
चन्द्रोपलाच्च सम्भूता चन्द्रकान्तिनदी श्रुता। रत्नकान्तिनदी श्रेष्ठा रत्नसमुद्भवा यतः ॥२८॥
तयोर्योगेऽत्र पूर्वस्मिन् संस्नातं ब्रह्मणा मुदा। ब्रह्मतीर्थमिति ख्यातं तस्मात्तीर्थोत्तमोत्तमम् ॥२९॥

---

सबै फूलहरू टेड्काभित्र परे। यसरी सबै फूल हराएको देखेर त्यो दैत्य अत्यन्त रिसायो। त्यो राक्षस रित्तो हात लिएर सधैँ आफ्नो घरमा फर्कन्थ्यो। दुई-तीन-चार पटकसम्म फेरि पनि बारम्बार यस्तै भयो। एकदिन दैत्यले टेड्काभित्र फूलहरू देख्यो। त्यसपछि अत्यन्त रिसाएर दुई हातले समातेर त्यो रुख उखेल्यो। रुखलाई भुईँमा राखेर हेर्दा रुखको टेड्काभित्र पींधमा रहेको अत्यन्त राम्रो शिवलिङ्ग उसले देख्यो ॥१३-१६॥

तेजले स्पष्टसँग नदेखिने त्यो शिवलिङ्ग रातमा बत्तीको ज्वालाजस्तो देखिन्थ्यो। सूर्यले संसारलाई जस्तै आफ्नो तेजले दिशाहरूलाई नै उज्यालो पार्दथ्यो। त्यसपछि त्यस दैत्यले अत्यन्त सुन्दर त्यस लिङ्गलाई स्पर्श गऱ्यो। त्यो ज्ञानी भयो, अनि उसले शिवलिङ्गलाई भक्तिपूर्वक बारम्बार प्रणाम गऱ्यो। शिवजीको निर्देशन अनुसार शिवका दूतहरू पुष्पकविमान लिएर त्यस दैत्यलाई लैजानका लागि आकाशबाट तुरुन्त यहाँ आए। वैशाख कृष्णपक्ष चतुर्दशीका दिन शिवदूतहरूले त्यसलाई विमानमा राखेर शिवलोकमा लगे। शिवका गणहरूले फूलको वर्षा गरे, गीत, मादल, ताल, झ्याम्झर आदि बाजा बजाएर त्यस दैत्यको सेवा गरे। त्यही सुबाहु शरीरैसित भगवान् शङ्करको सधैँ सेवक बन्न पुग्यो। ऊ शिवका गणहरूमध्ये माथिल्लो दर्जामा बस्न पुग्यो ॥१७-२२॥

हे विरूपाक्ष ! विशेष गरी अघि यस लिङ्ग र ब्रह्मतीर्थको माहात्म्य म फेरि बताउँछु, सुन। हे बाबु ! अघि कौत्सुक नाम गरेका कुनै ब्राह्मण थिए। पूर्वजन्ममा गरेका नराम्रा कृत्यले गर्दा उनका सम्पूर्ण अङ्ग कुष्ठरोगले ग्रस्त भएका थिए। अघि अगम्या स्त्रीलाई गमन गर्नाले यिनलाई कुष्ठरोग लागेको थियो। साथीका स्त्रीहरूसँग सङ्गम गर्दा यिनका पछाडिका फिला र लिङ्गमा खटिरा आएका थिए। त्यसैले यी आत्तिएका थिए। कुनै ब्राह्मणको मुखबाट तीर्थाटन गर्दा पापनाश हुने र रोग निको हुने कुरा थाहा पाएर ती ब्राह्मणले तीर्थयात्रा गरे। नेपाल जाने इच्छाले उनी उत्तर दिशातिर लागे। हिँड्दा-हिँड्दै थाकेका ती कौत्सुक ब्राह्मण विस्तार-विस्तार वाग्मतीतीर्थमा स्नान गर्न यहाँ आइपुगे ॥२३-२७॥

अघि ब्रह्माजीले स्नान गर्न भनी प्रसन्न हुँदै चन्द्रकान्त मणिबाट पैदा गरिएका चन्द्रकान्ति नदी र रत्नबाट पैदा गरिएकी रत्नकान्ति नदीको रचना गर्नुभएको थियो। ती दुईको सङ्गमस्थलमा ब्रह्माजीले प्रसन्न भएर स्नान गर्नुभयो। त्यसैले यसलाई सबै तीर्थमा उत्तमतीर्थ ब्रह्मतीर्थ भनियो ॥२८ -२९॥

---

५. ह्येवमेव, इति न.सं.पु.पाठः।
६. असेवयन्, इति न.सं.पु.पाठः।

संसस्नौ कौत्सुकश्चात्र भक्तिपूर्वं यथाविधि। कुशहस्तश्च सङ्कल्प्य कुष्ठरोगं विनाशितुम्[७] ॥३०॥
निमज्ज्योन्मज्य तोयेऽत्र ददर्श स्वतनुं द्विजः। तत्तद्रोगैर्विनिर्मुक्तां मुक्तकञ्चुमहिं यथा ॥३१॥
जमदग्निं ततोऽपश्यत्तपस्यन्तं तदाऽत्र वै। उपागमदसौ तस्य युवावस्थो हि कौत्सुकः ॥३२॥
प्रणम्य तं मुनिं भक्त्या पप्रच्छ मुक्तिहेतुकम्। ब्रह्मतीर्थे द्विज ! स्नानान्नीरोगो ज्ञानवान्मुनिः ॥३३॥

कौत्सुक उवाच

केनोपायेन वै देहं तारये दुःखसागरात्। इमं मलीमसैर्युक्तं सुखदुःखपरिप्लुतम् ॥३४॥
असार इह संसारः सारवान् वा प्रतीयते[८]। धर्मविवर्जितैर्लोकैः कथं मोक्ष्यामि तद्वद ॥३५॥

जमदग्निरुवाच

अस्त्युपायः स्वदेहस्य तारकश्चेह[९] संसृते। ज्ञानवतां विशेषेण न मूर्खाणां कदापि च ॥३६॥
अतश्चोर्ध्वे स्थले रम्ये चम्पेश्वरो विराजते। तस्मिन्मुक्तोऽसुरः कश्चिद् वृक्षमूलाग्रदर्शनात्[१०] ॥३७॥
तमाराधय विप्राद्य सद्यः कामं च प्राप्स्यसि[११]। षडक्षरैर्मुदा भक्त्या विनिद्रमुपवासतः[१२] ॥३८॥

नेमुनिरुवाच

स्नातस्तद्वचसा विप्रो हृष्टचेता हि साम्प्रतम्[१३]। तमर्चितुं ययौ तत्र यत्र चम्पेश्वरो द्विज ॥३९॥
लिङ्गं ददर्श विप्रोऽसौ दीपशिखाकृतिं शिवम्। भासयन्तं दिशो भाभिर्जगद्भानुं जगत्प्रभुम् ॥४०॥
साष्टाङ्गैश्च प्रणम्यादावेनमभ्यर्च्य वै पुनः। तुष्टाव च परिक्रम्य वाचा गद्गदया मुदा ॥४१॥

---

यी ब्राह्मणले यहाँ कुश हातमा लिएर कुष्ठरोगलाई नाश गर्नका निमित्त सङ्कल्प गर्दै भक्तिपूर्वक विधिअनुसार स्नान गरे। यस तीर्थको जलमा ती ब्राह्मणले खूबसित निमज्जन र उन्मज्जन गरेर स्नान गरे। त्यसले गर्दा काँचुली फेरेको सर्पजस्तै बनेर यिनको शरीर रोगबाट मुक्त भयो। ती कौत्सुक नाम गरेका युवक ब्राह्मणले त्यसबेला त्यहाँ तपस्या गर्न लागेका जमदग्नि ऋषिलाई देखे र उनको नजिकै गए। ब्रह्मतीर्थमा स्नान गर्नाले रोगबाट मुक्त भएर ज्ञानी र मुनि बनेका ती ब्राह्मणले भक्तिपूर्वक जमदग्नि मुनिलाई नमस्कार गरेर मुक्तिको उपाय सोधे ॥३०–३३॥

कौत्सुक ब्राह्मणले भने– कुन उपायबाट दुःखरूपी सुमद्रबाट पाप तथा सुख र दुःखले ग्रस्त भएको यो शरीरलाई तार्न सक्छु ? यो संसार साररहित छ। धर्म नभएका मानिसहरूले यसलाई सारजस्तो ठान्दछन्। त्यसलाई म कसरी त्याग्न सक्छु ? त्यो उपाय बताउनुहोस् ॥३४–३५॥

जमदग्निले भने – ज्ञानी मानिसहरूका निमित्त संसारबाट आफूलाई तार्ने उपाय छ, तर त्यो उपाय मूर्खका लागि कहिल्यै पनि उपलब्ध हुँदैन। यहाँभन्दा माथि राम्रो स्थलमा चम्पेश्वर भगवान् बस्नुभएको छ। त्यसै रुखको फेदमा उहाँको दर्शन पाएर अघि कुनै राक्षस मुक्त भएको थियो। हे ब्राह्मण ! छवटा अक्षर भएको शिवमन्त्र उच्चारण गर्दै उपवास बसी प्रसन्न भएर भक्तिपूर्वक जागरण तथा व्रत गरेर चम्पेश्वर भगवान्को आराधना गर। तिम्रो सबै इच्छा पूर्ण हुनेछ ॥३६–३८॥

नेमुनिले भन्नुभयो– तदनुसार नै ब्रह्मतीर्थमा स्नान गरेर हर्षित हुँदै चम्पेश्वर भगवान्को पूजा गर्न ती ब्राह्मण गए। ती ब्राह्मणले बत्तीको ज्वालाजस्तै तेजिलो सबै दिशाहरूलाई उज्यालो तुल्याउने, संसारका सूर्य र संसारका स्वामी भगवान् शिवको लिङ्ग दर्शन गरे ॥४०॥ पहिले उनले भगवान्लाई साष्टाङ्ग दण्डवत् गरे, बारम्बार पूजा गरे, परिक्रमा गरे र खुसीले गद्गद भएर उहाँको स्तुति गरे ॥४०–४१॥

---

७. कुष्ठोपसर्गनाशितुम्, इति न.सं.पु.पाठः।
८. असारमिह संसारं सारमिव प्रतीतिनम्, इति न.सं.पु.पाठः।
९. तारणमिह, इति न.सं.पु.पाठः।
१०. वृक्षमूलाप्रदर्शनात् निखन्य च, इति न.सं.पु.पाठः।
११. लभिष्यति, इति न.सं.पु.पाठः।
१२. विनिद्रेणोपवासतः, इति न.सं.पु.पाठः।
१३. हर्षितवाँश्च सांप्रतम्, इति न.सं.पु.पाठः।

ॐ नमः प्रणवाख्याय त्रिमात्राय च शूलिने। निरञ्जनाय देवाय सत्त्वानां पतये नमः ॥४२॥
तेजोरूपाय रुद्राय तेजसां पतये नमः। तेजोमयाय लिङ्गाय जीवलिङ्गेश ते नमः ॥४३॥
एवं स्तुत्वा तमीशानं तेजोलिङ्गञ्च कौत्सुकः। निराहारश्च तन्मन्त्री व्रतं कर्तुं मनो दधे ॥४४॥
मधोः कृष्णत्रयोदश्यां ब्रह्मतीर्थे जलाप्लुतः। तन्निशायाञ्च भक्त्या स जागृतवान् हरात्मकः ॥४५॥
व्यक्तीकृत्य तनुं लिङ्गाद्वरं तस्मै ददौ निशि। यद्वाञ्छितं हृदा मत्तस्तल्लभस्व द्रुतं प्रिय ![१४] ॥४६॥
एवं दत्त्वा वरं तस्मै लिङ्गे तिरोदधे विभुः। व्योमवाणीं नादयन्ती पुष्पवृष्टिर्बभूव हि[१५] ॥४७॥
यानहस्तास्तदा दूता रुद्राज्ञयाऽऽययुर्द्रुतम्। गीतवाद्यमहोल्लासै रुद्रयशः प्रगाय च ॥४८॥
प्रणिन्युः शिवलोकं तं ते दूताः चादरान्मुहुः[१६]। आस्थाय पुष्पके व्योम्नो लोकैः साध्विति कीर्तितम्[१७] ॥४९॥
अद्यापि देवताः स्थानं न मुञ्चन्ति कदाचन। तिष्ठन्ति सेवमानास्ते[१८] चैतल्लिङ्गं विरूपदृक् ॥५०॥
ब्रह्मतीर्थे हि यः स्नात्वा पश्यति चैवमादरात्[१९]। सर्वैनसा विनिर्मुक्तः शिवलोकं व्रजेत्सुखम् ॥५१॥
भूयो गच्छ विरूपाक्ष ! वारुण्यां दिश्यतोऽधुना। उन्मत्तेशो हि तत्राऽऽस्ते स्वर्णतीर्थेन वै सह ॥५२॥

क्रोशैकमात्रे च ततो विदूरे स्नात्वा द्रुतं तत्र वरे च तीर्थे।
संपूजय त्वं खलु तद्धि लिङ्गं यद्वाञ्छितार्थं प्रलभस्व नूनम्[२०] ॥५३॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां
ब्रह्मतीर्थचम्पेश्वरयोर्माहात्म्यं नामाष्टाधिकशततमोऽध्यायः ॥१०८॥

---

तीन मात्राले युक्त, प्रणम नाम भएका त्रिशूलधारी भगवान्लाई नमस्कार छ। निरञ्जन, सबै प्राणीका मालिक भएका देवतालाई नमस्कार छ। तेजोरूप लिने तेजका मालिक रुद्रलाई नमस्कार छ। हे जीवका लिङ्गेश्वर ! तेजोमय हजुरको लिङ्गलाई नमस्कार छ। यसरी कौत्सुक ब्राह्मणले तेजोलिङ्गको रूप लिने ती शङ्करको स्तुति गरेर निराहार बसी उहाँको मन्त्र जप्दै व्रत गर्ने विचार गरे। वैशाखकृष्ण त्रयोदशीका दिन ब्रह्मतीर्थको जलमा स्नान गरेर राति शिवस्वरूप धारण गरी भक्तिपूर्वक उनी जाग्राम बसे। त्यसपछि मध्यरातमा भगवान् शङ्कर त्यसै लिङ्गबाट प्रकट हुनुभयो र हे भक्त ! तिम्रो हृदयले जे चाहेको छ, त्यो वर तुरुन्त मबाट लेऊ भनेर ती ब्राह्मणलाई वर दिनुभयो ॥४२-४६॥

यसरी आकाशबाट आवाज निकाल्दै भगवान् शङ्करले ती ब्राह्मणलाई वर दिएर त्यसै लिङ्गमा अन्तर्धान हुनुभयो अनि पुष्पवृष्टि भयो। त्यसपछि भगवान् शङ्करको निर्देशन अनुसार गीत गाउँदै, बाजा बजाउँदै र भगवान् शङ्करको महत्त्व गाउँदै शिवजीका दूतहरू यान लिएर तुरुन्त आए। दुनियाँले धन्यवाद दिएका ती ब्राह्मणलाई पुष्पक विमानमा राखेर ती शिवदूतहरूले बारम्बार सम्मान गर्दै आकाशबाट शिवलोक लगे। हे विरूपाक्ष ! आजसम्म पनि त्यस ठाउँलाई कहिल्यै देवताले छोडेका छैनन्, यस लिङ्गको सेवा गरेर उनीहरू यसै ठाउँमा बस्छन् ॥४७-५०॥

जसले ब्रह्मतीर्थमा स्नान गरेर श्रद्धाका साथ यो चम्पकेश्वर शिवलिङ्गको दर्शन गर्छ त्यो व्यक्ति सम्पूर्ण पापबाट मुक्त भएर आनन्दसित शिवलोक जान्छ। हे विरूपाक्ष ! अब तिमी यहाँबाट पश्चिम दिशातिर जाऊ। यहाँ स्वर्णतीर्थको नजिकै उन्मत्तेश्वर भगवान् रहनुभएको छ ॥५१-५२॥

एक कोस टढा रहेको त्यस उत्तम तीर्थमा स्नान गरेर राम्रोसित त्यहाँ रहेको शिवलिङ्गको पूजा गर। तिमी आफूले चाहेजस्तो फल प्राप्त गर्न सक्नेछौ ॥५३॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा ब्रह्मतीर्थ र चम्पेश्वरको माहात्म्यनामक
एकसय आठौं अध्याय पूरा भयो।

---

१४. मत्तस्तल्लभ्याद्भक्त ते द्रुतम्, इति न.सं.पु.पाठः।
१५. ववर्ष पुष्पवृष्टिश्च व्योम्नो वाणीं निनादयन्, इति न.सं.पु.पाठः॥
१६. चाद्रयन्मुहुः, इति न.सं.पु.पाठः।
१७. वादिनम्, इति न.सं.पु.पाठः।
१८. सेवयन्नत्र, इति न.सं.पु.पाठः।
१९. चैवमाद्रयन्, इति न.सं.पु.पाठः।
२०. प्रलभेद्भवांस्तत, इति न.सं.पु.पाठः।

# नवाधिकशततमोऽध्यायः

## सुवर्णतीर्थोन्मत्तेश्वरशिवलिङ्गयोर्महिमा

### स्कन्द उवाच

ब्रह्मतीर्थे पुनः स्नात्वा चम्पकेशमपूपुजत्। विंशजन्मार्जितैः पापैः प्रमुक्तो धार्मिको द्विजः ॥१॥
भूयोऽगमद्विरूपाक्षो मुनिना सह कुम्भज। यत्रोन्मत्तेश्वरं लिङ्गं श्रद्धासिक्तकलेवरः ॥२॥
स्वर्णतीर्थे ततः स्नात्वोन्मत्तेश्वरमपूजयत्[1]। तपःशुक्लस्य षष्ठ्यां स तन्निशायां प्रजागृतः ॥३॥
सोऽपृच्छन्नेमुनिं रात्रौ लिङ्गार्चनं विधाय च। तल्लिङ्गस्य च माहात्म्यं तीर्थस्यैव च भक्तितः ॥४॥

### विरूपाक्ष उवाच

नेमुने ! ऋषिशार्दूल श्रोतुकामः पुनस्त्वयि। एतल्लिङ्गस्य तीर्थस्य माहात्म्यं भवति ध्रुवम् ॥५॥
एतत्कथं समुद्भूतमर्चनादस्य किं फलम्। तीर्थस्नानाद्विशेषेण वद मे सर्वविद्विभो ॥६॥

### नेमुनिरुवाच

आसीत्पुरा द्विजः कश्चिद्विष्णुभक्त इति श्रुतः। अन्तर्वेद्याश्रमी धीरः सर्वशास्त्रविशारदः ॥७॥
विद्यामदेन नित्यं स लोकान्नाऽगणयद् भृशम्। अकुत्सत् सर्वलोकाँश्च विद्यामानी च विद्यया ॥८॥
धर्ममनिन्दल्लोकानां[2] देवार्चनं जलाप्लवम्। क्रियावाक्यप्रमाणात्स विद्यादम्भेन मोहितः ॥९॥
तत्पापेन विलिप्तोऽसौ चोन्मत्तोऽभूद्विरूपदृक्। निराचारः पुनर्भूत्वा सर्वभुगचरद् बहिः ॥१०॥
त्यक्तो ग्रामभवैर्लोकैः पित्रा पत्न्या सुतैस्तथा। भ्रातृभिर्बान्धवैश्चाऽसावस्पृश्योन्मत्तकस्त्विति ॥११॥
समुत्तीर्य महीं शैलानत्रैव प्राप्तवाँस्तदा। सर्वभुक् च स चोन्मत्तो देशात्प्रनिःसृतः स्वयम् ॥१२॥

---

## अध्याय - १०९

### सुवर्णतीर्थ र उन्मत्तेश्वर शिवलिङ्गको महिमा

कार्तिक स्वामीले भन्नुभयो – त्यसपछि विरूपाक्षले ब्रह्मतीर्थमा स्नान गरेर चम्पकेश्वर भगवान्‌को पूजा गरे। यसबाट बीसौं जन्मसम्म गरेका पापबाट मुक्त भई विरूपाक्ष धर्मात्मा बने। हे अगस्त्य मुनि ! त्यसपछि नेमुनिलाई साथमा लिएर विरूपाक्ष श्रद्धापूर्वक उन्मत्तेश्वर भगवान्‌को लिङ्ग भएको ठाउँमा गए। त्यसपछि उनले स्वर्णतीर्थमा स्नान गरे, माघशुक्ल षष्ठीका दिन उन्मत्तेश्वर भगवान्‌को पूजा गरे। त्यस रात उनी जाग्राम बसे। राति लिङ्गको पूजा गरिसकेपछि उनले त्यस लिङ्ग र तीर्थको माहात्म्य भक्तिपूर्वक नेमुनिसँग सोधे ॥१-४॥

विरूपाक्षले भने – ऋषिश्रेष्ठ हे नेमुनि ! फेरि म हजुरसित यो लिङ्ग र तीर्थको माहात्म्य सुन्न चाहन्छु। यो लिङ्गको उत्पत्ति कसरी भयो ? यसको पूजा गरेर के फल पाइन्छ ? विशेष गरेर तीर्थमा स्नान गर्दा के हुन्छ ? हे प्रभु ! हजुर सबै जान्नुहुन्छ, मलाई बताउनुहोस् ॥५-६॥

नेमुनिले भन्नुभयो – अघि विष्णुभक्त नाम गरेका कुनै ब्राह्मण थिए। अन्तर्वेदीमा आश्रम भएका ती ब्राह्मण सबै शास्त्रका ज्ञाता थिए। विद्याको घमण्डले गर्दा मानिसहरूलाई उनी पटक्कै गन्दैनथे। विद्याले मै हुँ भन्ने ती ब्राह्मण सबै मानिसहरूको निन्दा गर्दथे। विद्याको घमण्डले मातेका ती पण्डित मानिसहरूले गरेको धर्म, देवताको पूजा र तीर्थस्नानलाई पनि कर्मयोगको प्रमाण दिएर निन्दा गर्दथे ॥७-९॥

हे विरूपाक्ष ! अभिमान र परनिन्दाको पापले ग्रस्त यी पण्डित दुराचारी, सर्वभक्षी र उन्मत्त भएर घुम्नका लागि बाहिर निस्किए। गाउँले, बाबु, पत्नी, छोराछोरी, दाजुभाइ र आफ्ना समुदायका मानिसहरूले स्पर्श गर्न पनि अयोग्य भएको पागल भनेर ती पण्डितलाई निकालिदिए। सर्वभक्षी ती उन्मत्त ब्राह्मण देश छाडेर आफैं पनि निस्किए। पृथ्वीमा रहेका पर्वतहरू नाघ्दै त्यसबेला उनी यहाँ आइपुगे ॥१०-१२॥

---

१. स्नात्वा चोन्मत्तेश्वरमर्हितः, इति न.सं.पु.पाठः।
२. अनिन्दद्धर्म लोकानाम्, इति न.सं.पु.पाठः।

चित्रकान्तिर्नदी पुण्या स्वर्णकूटाद्रिजा परा। सुवर्णप्रस्रवं तीर्थमाप्तस्तयोः सुसङ्गमे ॥१३॥
चित्तभ्रमणसोन्मत्तः स्वर्णतीर्थजलाप्लुतः। कार्त्तिकशुक्लपञ्चम्यामज्ञानतोऽपि साम्प्रतम् ॥१४॥
सुवर्णाभोऽभवद्देहः किञ्चिज्ज्ञानेन संयुतः। स्नानात्तस्य किञ्चिदूनो बभूव चित्तविभ्रमः[३] ॥१५॥
जलादुत्तीर्य तत्राऽसौ तस्थौ निरशनो द्विजः। शीतोष्णबाधां न्यक्कृत्य[४] वदन् शिवशिवेति च ॥१६॥
चित्तभ्रमेण विप्रोऽसौ तदाऽवददहर्निशम्। शिवशिवेति रुद्रेति नाथेति नाऽन्यधीः पुनः ॥१७॥
वैशाखपूर्णिमायाञ्च ह्यर्द्धरात्रे तदग्रतः। एतल्लिङ्गं समुद्भूतं स प्रोवाच[५] शिवेति वै ॥१८॥
प्रेक्ष्य स्पृष्ट्वा[६] ननामेशमुन्मत्तोऽसौ पुनः पुनः। चित्तभ्रमेण मुक्तोऽभूत्स्पर्शनात्तस्य दर्शनात् ॥१९॥
लिङ्गमानर्च भक्त्यैतद्विप्रेशः कुसुमैर्जलैः। अभूद्दिव्यतनुर्भूयः शिवज्ञानयुतः सुधीः ॥२०॥
ददौ तस्मै शिवः साक्षादेतल्लिङ्गाद्विनिःसृतः। सालोक्यपदवीं दिव्यां प्रमथानां गरीयसीम् ॥२१॥
अत्रागत्येशदूताश्च वाद्यगीतैः प्रसेवितम्। निन्युः शिवपुरं तं ते तद्यानेन महासुखम् ॥२२॥
उन्मत्तसेवया यस्मादेतल्लिङ्गसमुद्भवः। सर्वलोकैस्ततः प्रोक्तमुन्मत्तेश इति मुदा ॥२३॥
भूय एतस्य माहात्म्यं शृणु ध्रुवं विरूपदृक्। मुक्तः कश्चिज्जनश्चाऽत्र लिङ्गस्याऽस्य प्रसादतः[७] ॥२४॥
ददर्शाऽत्र मुनिं मैत्रं घुर्घुरो नाम राक्षसः। जपन्तञ्च जले स्नात्वा सलिलस्थं सुनिर्जनम् ॥२५॥
अधावद्राक्षसश्चाऽत्र ह्यवलोक्य च तं मुनिम्। हिंसात्मा हिंसितुं प्राप्तः शीघ्रं तं सत्त्वजीवनम्[८] ॥२६॥

---

त्यहाँ पवित्र चित्रकान्ति नाम गरेकी एउटी नदी छन् भने सुवर्णकूटबाट पैदा भएकी अर्की नदी छन्। ती दुबै नदीको सुन्दर सङ्गममा सुवर्णप्रस्रव नाम गरेको तीर्थ बनेको छ। चित्त भ्रमित भएको हुनाले पागलजस्तै भएका ती ब्राह्मणले कार्तिकशुक्ल पञ्चमीका दिन नजानीकन भए पनि स्वर्णतीर्थको जलमा स्नान गरे। नुहाएपछि उनको शरीर सुनौलो भयो, ज्ञान पनि पैदा भयो, चित्त घुमेर भएको बौलाहापनमा पनि केही कमी आयो ॥१३–१५॥

ब्राह्मण पानीबाट बाहिर निस्के, शिव-शिव भन्दै जाडो र गर्मीको पीडालाई सहेर निराहारै बसे। त्यसबेला ती बौलाहा ब्राह्मणले चित्तको विक्षेपका कारणले गर्दा दिनरात शिव-शिव, रुद्र हे नाथ ! भन्न थाले। त्यसबाहेक कतै उनको बुद्धि गएन। वैशाख पूर्णिमाको दिन आधारातमा उनको अगाडि यो लिङ्ग प्रादुर्भाव भयो। उनले शिव-शिव भनेर त्यसै लिङ्गलाई हेरे, स्पर्श गरे, बारम्बार नमस्कार गरे। यसरी यस लिङ्गको स्पर्श र दर्शनबाट उनको चित्तको भ्रान्ति हटेर गयो। ती ब्राह्मणले भक्तिपूर्वक फूल तथा जलले यस लिङ्गको पूजा गरे। त्यसले गर्दा उनको शरीर दिव्य भयो। शिवको ज्ञानले युक्त भएर ती ब्राह्मण विद्वान् भए ॥१६–२०॥

भगवान् शङ्करले यस लिङ्गबाट निस्किएर ती ब्राह्मणलाई प्रमथगणहरूमा सबैभन्दा माथिल्लो दिव्य गरिमामय सालोक्य पदवी दिनुभयो। यहाँ आएर भगवान् शङ्करका दूतहरूले बाजा बजाउँदै, गीत गाउँदै उनको सेवा गरेर आनन्दपूर्वक तिनलाई यानमा राखेर शिवपुरी लगे। उन्मत्त अर्थात् बौलाएको व्यक्तिले आराधना गरेको र त्यसैका लाग भगवान् शङ्करको आविर्भाव भएको हुँदा दुनियाँले त्यस शिवलिङ्गलाई उन्मत्तेश्वर भने ॥२१–२३॥

हे विरूपाक्ष ! म यस लिङ्गको माहात्म्य पुनः बताउँछु, सुन – यसै लिङ्गको कृपाले गर्दा अघि यसै ठाउँमा कुनै व्यक्ति मुक्त भएको थियो। यस ठाउँमा जलमा स्नान गरेर जलभित्रै उभिएर एकान्त स्थलमा जप गरिरहेका मैत्र ऋषिलाई घुर्घुर नाम गरेको राक्षसले देख्यो। हिंस्रक त्यो राक्षस सत्वगुणी ती मुनिलाई देखेर उनलाई मार्न तुरुन्त दौडियो ॥२४–२६॥

---

३. तदाल्पो वै चाभवच्चित्तविभ्रमः, इति न.सं.पु.पाठः।
४. शीतोष्णपीडनं सह्य, इति न.सं.पु.पाठः।
५. प्रोक्तो तस्मिन्, इति न.सं.पु.पाठः।
६. स्पृश्य, इति न.सं.पु.पाठः।
७. चैतल्लिङ्गप्रसादतः, इति न.सं.पु.पाठः।
८. अप्राप्तः शीघ्रं सत्त्वजीवनः, इति न.सं.पु.पाठः।

उन्ननाम करं रक्षः सङ्गृहीतुं मुनिं जले । जानुमात्रं जलं तीर्त्वा[९] स्वर्णतीर्थे च निश्चितम् ॥२७॥
तज्जलस्पर्शनाद्रक्षश्चाऽभूज्ज्ञानयुतस्तदा । अयं जनो मुनिश्रेष्ठो भवेद्धियेति निर्णयात्[१०] ॥२८॥
बध्वाऽञ्जलिं तदा तस्मै भक्त्या ननाम राक्षसः । नमोऽस्तु ब्रह्मदेवाय क्षमस्व मेऽपराधकम् ॥२९॥
व्याचष्ट वचनं तस्मै मैत्रो नाम मुनीश्वरः । तच्चेष्टाञ्च समालोक्य कृपार्द्रहृदयो द्विजः ॥३०॥

मैत्र उवाच

कश्चाऽऽगतो भवानत्र किमर्थं वद मेऽधुना[११] । ममैवाऽस्मिन्नहःस्थाने रहस्योपासके मयि[१२] ॥३१॥
अथवा क्षुत्पिपासार्त्तो जलं पातुमिहागतः । मां भोक्तुमथवा रक्षो वद मे तद्तं तथा ॥३२॥

घुर्घुर उवाच

सत्यमेतद्विभो ! ब्रह्मन् यदुक्तं भवताऽधुना । सर्वविदा च तत्कर्त्तुमेवमेवमिहाऽऽगतः ॥३३॥
क्षुत्पिपासाप्रबद्धोऽहं मांसशोणितभुक् तदा । जात्या रक्षो महामूढः परपिण्डोपजीवनः ॥३४॥
भवतो दर्शनाच्चैव स्पर्शनादेतदम्भसः । तस्माज्जानाम्यहञ्वेदं संसारं समदं प्रभो ॥३५॥
कथं मोक्ष्याम्यहं तात ! चेमां तनुमसारतः । वदाधुना मुनिश्रेष्ठ ! संसारदुःखसागरात् ॥३६॥

मैत्र उवाच

एतत्तीर्थवरे स्नानं कुरु राक्षस ! साम्प्रतम् । तव पुरा कृतं पापं विनश्यति न संशयः ॥३७॥
एतल्लिङ्गं पुनर्भक्त्या चोन्मत्तेशं प्रपूजय । प्राप्स्यसि त्वं[१३] वरं तस्माद्यद्वाञ्छितञ्च कौणप ॥३८॥

---

त्यस राक्षसले स्वर्णतीर्थको पानीमा घुँडासम्म आउञ्जेल पसेर जलमा स्थिर भएर बसेका ऋषिलाई समात्न हात उठायो । त्यो जल छुनेबित्तिकै त्यो राक्षस ज्ञानी बन्न पुग्यो । यो मानिस अवश्य पनि श्रेष्ठमुनि हुनुपर्छ भन्ने उसको बुद्धिले निर्णय गऱ्यो । हात जोडेर त्यस राक्षसले भक्तिपूर्वक ती ऋषिलाई नमस्कार गऱ्यो । ब्रह्मदेवलाई नमस्कार छ, मेरो अपराध क्षमा गर्नुहोस् भन्यो । त्यसको क्रियाकलापलाई देखेर मैत्र नाम गरेका ती ऋषिको हृदय दयाले पग्लियो ॥२७–३०॥

मैत्र ऋषिले भने – हे राक्षस ! तिमी को हौ ? एकान्तस्थलमा उपासना गरेर बसिरहेको मेरो अगाडि किन आयौ ? भोक अथवा प्यासले आत्तियौ ? अथवा जल पिउन यहाँ आयौ ? अथवा मलाई खान आएका हौ ? जस्ताको तस्तै भन ॥३१–३२॥

राक्षस घुर्घुरले भन्यो – हे प्रभु ! हे ब्राह्मण ! हजुर सबै कुरा जान्नुहुन्छ, तपाईंले जे कुरा बताउनुभयो, त्यो सत्य छ । त्यही काम गर्न म यहाँ आएको हुँ । म भोक र प्यासले बाँधिएको थिएँ, म मासु तथा रगत खाने राक्षस जाति हुँ । म अत्यन्त मूर्ख छु, अर्काको शरीर भक्षण गरी प्राण धारण गरेको छु । हजुरको दर्शन र यो पानीको स्पर्शले गर्दा मदले युक्त यो संसार नाशवान् छ भन्ने कुरा मैले थाहा पाएँ । हे मुनिश्रेष्ठ ! असार संसाररूपी दुःखको समुद्रबाट यो शरीरलाई कसरी छुट्याउन सकिन्छ ? मलाई अहिले नै बताइदिनुहोस् ॥३३–३६॥

मैत्रले भने – हे राक्षस ! अब तिमी यस उत्तम तीर्थमा स्नान गर, तिम्रो अघि गरेको पाप नाश हुनेछ, यसमा शङ्का छैन । हे राक्षस ! त्यसपछि तिमीले भक्तिपूर्वक उन्मत्तेश्वर भगवान्‌को यस लिङ्गको पूजा गर । त्यसबाट तिमीलाई इच्छा लागेको वर प्राप्त हुनेछ ॥३७–३८॥

---

९. तीर्य, इति न.सं.पु.पाठः ।
१०. निर्णयात्, इति न.सं.पु.पाठः ।
११. समिहाधुना, इति न.सं.पु.पाठः ।
१२ रहस्योपासिते सति, इति न.सं.पु.पाठः ।
१३. लभिष्यसि, इति न.सं.पु.पाठः ।

नेमुनिरुवाच

ऋषेरित्युपदेशं स समादायाऽऽशु सादरम्। प्रययौ राक्षसो नूनं स्नात्वाऽत्रैव विरूपदृक् ॥३९॥
फाल्गुनसितचतुर्थ्याञ्चैतल्लिङ्गमपूजयत्[१४]। वन्यैः पुष्पैः फलैस्तोयैरुदासीनश्च भक्तितः ॥४०॥
एकं संवत्सरं यावद्देतल्लिङ्गमपूपुजत्। ततः पञ्चत्वमापन्नः तीर्थेऽस्मिन्[१५] स विरूपदृक् ॥४१॥
अत्रैव प्रमथाः सर्वे सङ्गत्य[१६] हाटकैर्घटैः। अभिषेकं ददुस्तस्मै प्रमथत्वेन वै तदा ॥४२॥
आस्थाय पुष्पके याने प्रमथा राक्षसञ्च तम्। निन्युः शिवपुरं रम्यं रुद्रकन्याप्रसेवितम् ॥४३॥
स एव राक्षसो वत्स प्रमथानां बलोद्धतः। अभूदद्यापि वीरश्च रुद्रस्याऽनुचरोऽनिशम् ॥४४॥
भूयो व्रज विरूपाक्ष ! याम्यायां दिशि सादरम्[१७]। नन्दितीर्थेन वै सार्द्धं यत्राऽऽस्ते नन्दिकेश्वरः ॥४५॥

गत्वाऽऽशु तत्रैव वरे हि तीर्थे स्नानञ्च कुर्याः खलु वत्स भक्त्या।
सम्पूजय त्वं वरनन्दिकेशं यद्वाञ्छितार्थं प्रलभस्व नूनम्[१८] ॥४६॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये
विरूपाक्षतीर्थयात्रायां सुवर्णतीर्थोन्मत्तेश्वरयोर्माहात्म्यं नाम नवाधिकशततमोऽध्यायः ॥१०९॥

---

नेमुनिले भन्नुभयो - हे विरूपाक्ष ! ऋषिको त्यो उपदेश ग्रहण गर्दै त्यस राक्षसले त्यसै तीर्थमा भक्तिपूर्वक स्नान गऱ्यो। फाल्गुनशुक्ल चतुर्थीका दिन त्यस राक्षसले विरक्त भएर वनमा पैदा भएका फूल तथा फलले भक्तिपूर्वक यस लिङ्गको पूजा गऱ्यो ॥३९-४०॥

हे विरूपाक्ष ! एक वर्षसम्म त्यस राक्षसले यस लिङ्गको पूजा गऱ्यो र यसै ठाउँमा मऱ्यो। यसै ठाउँमा आएर प्रमथहरूले सुनका कलशद्वारा प्रमथगणको रूपमा त्यसलाई अभिषेक दिए। प्रमथगणहरूले त्यस राक्षसलाई राखेर रुद्रकन्याद्वारा सेवा गराउँदै सुन्दर शिवलोकमा लगे। हे बाबु ! प्रमथगणको बीचमा महाबली भएर रहेको त्यो वीर राक्षस आज पनि रुद्रको नित्यसेवक भएर बसिरहेको छ ॥४१-४४॥

हे विरूपाक्ष ! अब तिमी यहाँबाट दक्षिण दिशामा पर्ने त्यस नन्दितीर्थमा जाऊ जहाँ नन्दितीर्थका साथमा नन्दिकेश्वर भगवान् रहनुभएको छ ॥४५॥

हे बाबु ! त्यस उत्तम तीर्थमा तुरुन्त गएर तिमीले भक्तिपूर्वक स्नान गर अनि उत्तम नन्दिकेश्वर भगवान्को पूजा गर। त्यसो गर्नाले तिमीले चाहेको फल पाउनेछौ ॥४६॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा सुवर्णतीर्थ र उन्मत्तेश्वरको माहात्म्यनामक
एकसय नवौं अध्याय पूरा भयो।

---

१४. .....लिङ्गञ्च समर्चितम्, इति न.सं.पु.पाठः।
१५. अत्रैव, इति न.सं.पु.पाठः।
१६. आगत्य, इति न.सं.पु.पाठः।
१७. चेतो याम्ये दिशि ध्रुवम्, इति न.सं.पु.पाठः।
१८. प्रलभेद्भवांस्तद्, इति न.सं.पु.पाठः।

# दशाधिकशततमोऽध्यायः

## नन्दितीर्थनन्दिकेश्वरशिवलिङ्गयोर्महिमा

स्कन्द उवाच

स्वर्णतीर्थे ततः स्नात्वा चोन्मत्तेशप्रपूजनात्। विरूपाक्षस्तदाऽगस्त्य ! चित्तोन्मादं जहौ खलु ॥१॥
ततोऽगमद्विरूपाक्षस्तेन सार्द्धं मुदा पुनः। धनुश्चतुःशते याम्ये यत्राऽऽस्ते नन्दिकेश्वरः ॥२॥
नन्दितीर्थे ततः स्नात्वा नन्दिकेश्वरमर्चयत्। भक्त्या पञ्चोपचारैः स तन्मन्त्रज्ञो हि ते मुने ! ॥३॥
तपःशुक्लस्य सप्तम्यामुपोष्य व्रतमाचरत्। रुद्रजापी शुचिर्भक्त्या विनिद्रो निशि पूजकः ॥४॥
व्यतीतायां निशायां स पप्रच्छ नेमुनिं पुनः। लिङ्गस्यैव च माहात्म्यं तीर्थस्य च घटोद्भव ॥५॥

विरूपाक्ष उवाच

संसारतारणज्ञार्य वद तत्त्वभृतां वर। श्रोतुकामः पुनश्चाहं त्वत्तः[1] सर्वविदोऽधुना ॥६॥
एतल्लिङ्गस्य माहात्म्यं तीर्थस्य च विशेषतः। यथोद्भूते च ते पूर्वं केनैव हि प्रकाशिते ॥७॥

नेमुनिरुवाच

कैलाशे संस्थिते रुद्रे देव्या सह प्रवादिते। भृङ्ग्यविशद्रहः स्थाने भृङ्गरूपेण कैतवात् ॥८॥
तद्वार्त्ताञ्च समादाय भृङ्गी त्वरितमाययौ। जयायै कथयामास यदुक्तं शम्भुना रहः ॥९॥
तत्सर्वं ज्ञातवान् रुद्रो भृङ्गिणा छद्मना यतः। रहःस्थाने समाविश्य तद्वार्ता च हृता खलु[2] ॥१०॥
ततो विभू रुषाविष्टस्तदा भृशं विरूपदृक्। व्याजहार वचः शीघ्रं शापं दातुञ्च नन्दिने ॥११॥

ईश्वर उवाच

भृङ्गिणा छद्मना चाऽत्र रहःस्थानं प्रविश्य च। यत्तद्वार्त्तां समाहृत्य स्वपत्नीबोधिता[3] ध्रुवम् ॥१२॥
मद्द्वारपालकौ नित्यं भूत्वा परनिषेधकौ। प्रविष्टञ्च रहःस्थानं त्वत्सम्मतेन भृङ्गिणा ॥१३॥
भूत्वा निषेधको द्वास्थस्तं प्रवेशितवान्यतः। तस्माच्च मानुषो भूया भूमौ निवासकारकः ॥१४॥

---

## अध्याय – ११०

### नन्दितीर्थ र नन्दिकेश्वर शिवलिङ्गको महिमा

कार्तिक स्वामीले भन्नुभयो– त्यसपछि स्वर्णतीर्थमा स्नान गरेर उन्मत्तेश्वर भगवान्‌को पूजा गरेपछि विरूपाक्षले चित्तको उन्मादलाई त्यागे। फेरि विरूपाक्ष प्रसन्न हुँदै नेमुनिलाई साथमा नै लिएर त्यहाँबाट आठ सय गज पर रहेको दक्षिण दिशामा अवस्थित नन्दिकेश्वर भगवान् रहनुभएको ठाउँमा गए। हे मुनि ! शिवमन्त्रका ज्ञाता विरूपाक्षले नन्दितीर्थमा स्नान गरे र नन्दिकेश्वर भगवान्‌को भक्तिपूर्वक पञ्चोपचार विधिले पूजा गरे। माघशुक्ल सप्तमीका दिन पवित्र भएर भगवान् शङ्करको मन्त्र जप्दै रातमा विरूपाक्षले उहाँको पूजा गरे। रातभरि जाग्राम बसेर व्रत गरे। हे अगस्त्य मुनि ! रात बितेपछि उनले नेमुनिसँग फेरि यस लिङ्ग र तीर्थको माहात्म्य सोधे ॥१–५॥

विरूपाक्षले भने – तपाईं संसारलाई तार्ने विधिका ज्ञाता हुनुहुन्छ, सम्पूर्ण तत्वज्ञहरूमध्ये श्रेष्ठ हुनुहुन्छ, सम्पूर्ण कुरा जान्ने हजुरसित फेरि म यस लिङ्गको र विशेष गरी यस तीर्थको माहात्म्य सुन्न चाहन्छु। यी तीर्थ र लिङ्ग कसरी उत्पन्न भएका थिए, यिनीहरूलाई पहिले कसले प्रकाशमा ल्याएको थियो ? त्यो सबै बताउनुहोस् ॥६–७॥

नेमुनिले भन्नुभयो – कैलाशको शिखरमा भगवान् शङ्कर भगवती पार्वतीका साथ वार्तालाप गरेर बस्नुभएको थियो। त्यसै एकान्तस्थलमा अचानक भमराको रूप लिएर भृङ्गी प्रवेश गरे। त्यसपछि भृङ्गी तुरुन्त बाहिर आए र उनले भगवान् शङ्करले एकान्तमा जे कुरा भन्नुभएको थियो त्यो वृत्तान्त जयालाई बताए। भगवान् शङ्करले एकान्तस्थलमा छद्मरूप लिएर प्रवेश गरेको भृङ्गीले यहाँको रहस्यमय वृत्तान्त लिएर गयो भन्ने कुरा थाहा पाउनुभयो। हे विरूपाक्ष ! त्यसबेला भगवान् शङ्कर धेरै रिसाउनुभयो र नन्दीलाई तुरुन्त सराप दिँदै भन्न थाल्नुभयो ॥८–११॥

भगवान्‌ले भन्नुभयो – छद्म रूपधारी भृङ्गीले यो एकान्तस्थलमा प्रवेश गरेर यहाँको सबै वृत्तान्त लिएर गयो र आफ्नी पत्नीलाई बतायो। तिमीहरू द्वारपाल बनेर अरुलाई भित्र प्रवेश गर्न नदिनका लागि बसेका थियौ। तिमीहरूको सम्मति अनुसार भृङ्गी यो एकान्त स्थानमा प्रवेश गर्‍यो। मेरो एकान्त कक्षमा अरुलाई आउन नदिन खटिएको ढोके भएर पनि तैँले भृङ्गीलाई प्रवेश गर्ने अवसर दिइस्। त्यसैले आजदेखि तँ पृथ्वीमा बस्ने मनुष्य बन् ॥१२–१४॥

---

१. त्वयि, इति न.सं.पु.पाठः।
२. तद्वार्त्तां हृतवानिति, इति न.सं.पु.पाठः।
३. स्वपत्नीञ्चाब्रवीद, इति न.सं.पु.पाठः।

नन्द्युवाच

मया न ज्ञायते सत्यं भृङ्गिचरित्रमीश्वर। तेन नोक्तं ममाऽग्रे च सत्यमेतन्न संशयः ॥१५॥
अनेन वञ्चितश्चाऽहं मायया वा महेश्वर। अत्र स्थितौ चिरं कालमावां जानीहि निश्चितम् ॥१६॥
मा मा शापो हि दातव्यस्तन्मेऽविजानते विभो। प्रोक्तं निरपराधाय न दत्तं लक्षणं श्रुतौ ॥१७॥

ईश्वर उवाच

तेन समं महाद्वारे त्वमपि संस्थितोऽसि वै। भृङ्गिणं कैतवस्थञ्च नन्दिन्! जानासि नो कथम्[४] ॥१८॥
तस्माद्दत्तो मया शापो नन्दिन् तुभ्यञ्च साम्प्रतम्। सङ्गदोषेण सर्वे हि[५] पापं पुण्यं प्रभुञ्जते ॥१९॥
तस्मात्सर्वप्रयत्नेन साधुसङ्गः प्रशस्यते। न विनश्यति मे शापो यावद् द्वादशवत्सरम् ॥२०॥
मणिमत्पर्वतस्याधो मणिभूमयशेखरे। मणिप्रभा नदी यत्र नन्दिन्! गच्छ हि राजते ॥२१॥
रत्नकान्तिनदी पुण्या स्वर्णप्रभा तथापरा। तयोश्च सङ्गमे नन्दिन् स्नात्वाऽऽराधय मां तदा ॥२२॥
मच्छापान्ते ततस्त्वं वै द्वारस्थो सम्भविष्यसि। गच्छ नन्दिन्! महीं क्षिप्रं यावद् द्वादशवत्सरम् ॥२३॥

नेमुनिरुवाच

समाययौ तदा नन्दी सत्वरं क्षितिमण्डलम्। परिभ्रम्य रसां तीर्थमत्रैव प्राप्तवान्मुने ॥२४॥
सस्नौ सुसङ्गमे नद्योर्नन्दी भक्त्या यथाविधि। रुद्राङ्काब्दव्यतीते च मधोः कृष्णाष्टमीदिने ॥२५॥
प्रोन्मज्ज्याशुजलान्नन्दी ददर्श स्वतनुं तदा। दिव्यरूपां यथापूर्वं तेजस्विनीं त्रिलोचनाम् ॥२६॥
स्नात्वा नन्दी च तत्तीरे दध्यौ शिवं परात्परम्। वृष्टिशीतानिलातापैः सोढ्वा पीडां निरन्तरम्[६] ॥२७॥
एकाब्दान्तेऽसिताष्टम्यां मधोस्तदग्रतो निशि। एतल्लिङ्गं समुद्भूतं ध्यायमानं समर्चितम् ॥२८॥
प्रेक्ष्य लिङ्गं समुद्भूतं स्तोतुं मनो दधे तदा। वाचा गद्गदया नन्दी लोमाञ्चनो हि हर्षकैः ॥२९॥

---

नन्दीले भने – हे ईश्वर! भृङ्गीको चरित्र मैले थाहा पाइनँ, यो कुरा सत्य हो। उनले मलाई यो कुरा भन्दै भनेनन्, यसमा शङ्का छैन। हे महेश्वर! यिनबाट अथवा मायाबाट हामी ठगियौँ। हामी बसेको धेरै समय भयो भन्ने कुरा हजुरले बुझ्नुपर्छ। हे प्रभु! यस विषयमा मलाई केही थाहा छैन, सराप नदिनुहोस्। गल्ती नभएको व्यक्तिलाई सराप दिनुहुँदैन भनेर वेदमा पनि भनिएको छ॥१५-१७॥

भगवान्ले भन्नुभयो – हे नन्दी! मूल ढोकामा तँ पनि त्यसैसित बसेको थिइस्। छल गर्न लागेको त्यो भृङ्गीको बारेमा तैँले कसरी थाहा पाइनस्?। हे नन्दी! त्यसैले मैले अहिले तिमीलाई पनि सराप दिएँ किनभने सङ्गतको दोषले हुने पाप र पुण्य सबैले भोग्नुपर्छ। तसर्थ सकेसम्म सज्जनकै सङ्गति गर्नु उत्तम हुन्छ भनिएको छ। बाह्र वर्ष नपुगुञ्जेल मैले दिएको यो सरापको नाश हुँदैन॥१८-२०॥

हे नन्दी! मणिमान् नामक पर्वतभन्दा तल मणिमय भूमि भएको पर्वतशिखरमा मणिप्रभा नाम गरेकी नदी विराजमान भएकी छन्। अब तिमी मणिको भूमिले बनेको त्यस शिखरमा जाऊ। हे नन्दी! रत्नकान्ति नाम गरेको पवित्र नदी र स्वर्णप्रभा नाम गरेकी अर्की नदी छन्। ती दुई नदीको सङ्गमस्थलमा ध्यान गरेर मेरो आराधना गर। हे नन्दी! मेरो सराप अन्त्य भएपछि फेरि तिमी द्वारपाल हुन पाउनेछौ। बाह्र वर्ष नबितुञ्जेल तिमी तुरुन्त पृथ्वीमा जाऊ॥२१-२३॥

नेमुनिले भन्नुभयो – हे मुनि! त्यसपछि नन्दी तुरुन्त सम्पूर्ण पृथ्वीमण्डल घुम्दै यसै तीर्थमा आइपुगे। नन्दीले यी दुई नदीको सङ्गमस्थलमा बाह्र वर्ष बितेपछि वैशाखकृष्ण अष्टमीका दिन विधि अनुसार भक्तिपूर्वक स्नान गरे। त्यहाँ नन्दीले छिट्टै जलबाट उत्रेर आफ्नो शरीरलाई हेरे। उनले पहिले सराप नपरेको अवस्थामा आफ्नो शरीर जस्तो थियो त्यस्तै तीन आँखा भएको तेजस्वी दिव्य विग्रह देखे। नन्दीले स्नान गरेर त्यस तीरमा वर्षा, ठण्डी, हावा र गर्मीको पीडालाई सहँदै परभन्दा पनि पर रहेका शिवको ध्यान गरे। एक वर्ष पुगेपछि वैशाख महिनाको कृष्ण अष्टमी तिथिको रातमा ध्यान तथा पूजा गर्दागर्दै उनकै नजिकमा लिङ्गको प्रादुर्भाव भयो। लिङ्ग उत्पन्न भएको देखेर हर्षले रोमाञ्चित हुँदै नन्दीले गद्गद स्वर निकालेर स्तुति गर्न थाले॥२४-२९॥

---

४. नन्दिन् वेत्सि कथन्न भोः, इति न.सं.पु.पाठः। ५. सर्वैश्च, इति न.सं.पु.पाठः।
६. सुपीडां सह्य वै भृशम्, इति न.सं.पु.पाठः।

नन्द्युवाच

ॐ पराय परमेशाय परापराय वै नमः। जीवेश्वराय जीवाय जीविनेऽङ्गाय वै नमः ॥३०॥
ध्यातव्याय धिया नित्यं ध्यानध्येयस्वरूपिणे[७]। अगम्याय च गम्याय सर्वेश्वर नमोऽस्तु ते ॥३१॥

नेमुनिरुवाच

स्तुतिपरे तदा तस्मिन् शिवदूताः समाययुः। विमानपाणयश्चात्र चानेतुं नन्दिनं मुने ॥३२॥
तमास्थाय विमाने ते निन्युः शिवपुरं द्रुतम्। गीतवाद्यमहोल्लासैः पुष्पवर्षैः प्रसेव्य च ॥३३॥
नन्दिना च पुरा स्नातं नन्दितीर्थमुदाहृतम्। सेवितो हि तथा तेन नन्दिकेश्वर ईरितः ॥३४॥
कश्चिन्म्लेच्छो विमुक्तोऽत्र भूयः शृणु विरूपदृक्। पूर्वजन्मविपाकेन सोऽभूदर्द्धतनुर्नृपः ॥३५॥
असमाप्तकृताद्धर्मात्पूर्वजन्मनि भूपतिः। अदक्षाय कृताद्दानात्ततोऽभूदर्द्धविग्रहः ॥३६॥
म्लेच्छपत्नी च तन्माता ददर्श स्वात्मजं तदा। शय्यायां तं प्रसूतञ्च प्रेक्ष्य दुःखातुरा च सा ॥३७॥
तमादाय द्रुतं रात्रावुदक्षिपत् वने बहिः[८]। उपहसन्ति लोका मां कृत्वेति प्रेक्ष्य मेऽर्भकम् ॥३८॥
ततः कश्चित्किरातोऽत्र मृगयायां समागमत्। ददर्श बालकं क्रुष्टं रुदन्तं निर्जने वने ॥३९॥
अचिन्तयत्तदा कण्डुः किमिति कस्य बालकः। क्षणं विचिन्त्य गेहं स्वं तमादाय ययौ तदा ॥४०॥
अपोषयत्तमाहृत्य स्वात्मजमिव सन्ततम्। स विन्यस्य प्रियायै च भवतु कोऽप्यपुत्रकः ॥४१॥
दिने दिने ववृधेऽसौ पुष्टाङ्गो वयसा युतः। आपञ्चविंशतिर्वर्षं[९] शय्यायां नाऽशयिष्ट सः ॥४२॥

---

नन्दीले स्तुति गर्दै भने – पर तथा अपर स्वरूप भएका परम परमेश्वरलाई नमस्कार छ। प्राणीका अङ्ग भएका जीवस्वरूप जीवेश्वरलाई नमस्कार छ। सधैं बुद्धिद्वारा ध्यान गर्न योग्य, ध्यान र धारणामय शरीर लिने अगम्य तथा गम्यस्वरूप भएका सबैका अधिपति हजुरलाई बारम्बार नमस्कार छ ॥३०-३१॥

नेमुनिले भन्नुभयो – यसरी स्तुति गरेपछि विमान लिएर नन्दीलाई लैजानका लागि शिवजीका दूतहरू त्यहाँ आए। ती दूतहरूले उनलाई विमानमा राखेर गीत गाउँदै, बाजा बजाउँदै, फूल वर्षा गर्दै बडो उत्सवका साथ ससम्मान शिवलोक लगे। अघि नन्दीले स्नान गरेको हुँदा त्यसलाई नन्दितीर्थ भनियो। नन्दीले आराधना गरेको हुँदा त्यस लिङ्गको नाम नन्दिकेश्वर रह्यो। हे विरूपाक्ष ! अघि यहाँ पूर्वजन्मको कर्मले गर्दा आधा शरीर भएको कुनै म्लेच्छ जातिको राजा मुक्त भएको थियो। पूर्वजन्ममा त्यस राजाले अपूरो धर्म गरेको थियो। बायाँ हातले दान दिएको हुनाले उसको शरीर आधामात्र भएको थियो। त्यस म्लेच्छकी आमा ओछ्यानमा जन्मिएको त्यस्तो आफ्नो छोरालाई देखेर त्यसबेला अत्यन्त दुःखित र व्याकुल बनेकी थिई।दुनियाँले यस्तो मेरो छोरोको उपहास गर्नेछ भन्ने ठानेर उसले रातमा नै बाहिर जङ्गलमा लगेर आफ्नो छोरोलाई फालिदिई ॥३२-३८॥

त्यसपछि त्यहाँ कुनै किराति शिकार खेल्दै आयो। उसले एकलास वनमा कराई कराई रोइरहेको बालकलाई देख्यो। त्यसबेला त्यस किरातिले सोच्यो – यो के हो ? यो कसको बालक हो ? एकछिन विचार गऱ्यो र त्यस बालकलाई लिएर आफ्नो घर गयो। यो बालक यहाँ रहँदा कुनै मानिस पुत्रहीन बन्नेछ भनी त्यस बालकलाई आफ्नी पत्नीका हातमा सुम्पिदियो। त्यसपछि त्यसले आफ्नो छोरोजस्तै गरेर त्यसको पालनपोषण गऱ्यो ॥४१॥ दिनदिनै त्यो बालक बढ्दै गयो। उसका अङ्गहरू उमेरले गर्दा पुष्ट हुँदै गए। पच्चीस वर्षसम्म त्यस बालकले कहिल्यै पनि ओछ्यान छोडेन ॥३९-४२॥

---

७. ध्यानधारणदेहिने, इति न.सं.पु.पाठः।
८. रात्रावुक्षिपत्कानने बहिः, इति न.सं.पु.पाठः।
९. पञ्चविंशसमां यावत्, इति न.सं.पु.पाठः।

तद्वयोऽन्ते तदार्द्धाङ्गो जानुघर्षेण सञ्चरन्। ग्रामं ग्रामाद्बहिर्म्लेच्छः कष्टात्कष्टतरं द्विज ॥४३॥
एकदा दिवसे रात्रौ ददर्श हारीतं मुनिम्। नन्दितीर्थजले स्नातं[10] नन्दीश्वरसमर्चकम् ॥४४॥
व्रजाम्यहञ्च तत्रैव तनुं प्रक्षालितुं जलैः। वैशाखपूर्णिमायां स इति कृत्वा मनो दधे ॥४५॥
घर्मार्त्त आययौ चात्र जले प्रक्षालितुं तनुम्। नन्दितीर्थञ्च सम्प्राप्तो हीनाङ्गोऽसौ[11] शनैः शनैः ॥४६॥
प्रक्षालितं स्वकं देहमर्धाङ्गं तज्जलैस्तदा। निमज्ज्योन्मज्ज्य तत्तीर्थे ददर्श स्वतनुं पुनः ॥४७॥
निष्पापो ज्ञानवान्भूत्वा विकिल्विषतनुः शुभः[12]। पादेनैकेन संसारं समर्थो धावितुं पुनः ॥४८॥
ज्ञानासक्तस्ततोऽर्धाङ्गश्चात्रैत्य भक्तितो मुदा। अपूपुजज्जलैरेनं करेण संस्पृशञ्छिवम् ॥४९॥
तत आगत्य तद् दूतास्तमास्थाय विमानके। समानिन्युः पुरं शैवं वाद्यगीतैः प्रमोदितम् ॥५०॥
स एव प्रमथानाञ्च वरिष्ठोऽभूद् गणाधिपः। रुद्रपार्श्वचरो नित्यमेतल्लिङ्गप्रसादतः ॥५१॥
भूयो गच्छ ह्यतोऽधस्त्वं यत्र वै गोखुरेश्वरः। गोतीर्थस्य तटे दूरे क्रोशैकमात्रके द्विज ॥५२॥
तीर्थे गवामाप्लवनं कुरु त्वं सर्वोद्भवैनःपरिमुक्तदेहः।
सम्पूजयेशं प्रसभञ्च भक्त्या कामञ्च यत्प्राप्स्यसि वाञ्छितं ते ॥५३॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां नन्दितीर्थनन्दिकेश्वरयोर्माहात्म्यं नाम दशाधिकशततमोऽध्यायः ॥११०॥

---

हे विरूपाक्ष ! पच्चीस वर्ष पुगेपछि आधा अङ्ग भएको त्यो बालक घुँडाले घस्रदै हिँड्न थाल्यो। बडो कष्टसँग त्यो एक गाउँबाट अर्को गाउँ हुँदै बाहिर गयो। एक दिन राति उसले नन्दितीर्थमा स्नान गरेर नन्दीश्वर भगवान्‌को पूजा गर्न लागेका हारित मुनिलाई देख्यो ॥४३–४४॥

वैशाखपूर्णिमाको दिन उसले म पनि जलले शरीरलाई पखाल्न त्यहाँ जान्छु भन्ने विचार गऱ्यो। आधा अङ्ग भएको यो पुरुष घामले आत्तिएर शरीर पखाल्नका लागि नन्दितीर्थमा आयो। त्यस अर्धाङ्गले यस तीर्थको जलले आफ्नो शरीरलाई जलमा डुब्दै उत्रँदै गरी खूबसित पखाल्यो र त्यसपछि उसले आफ्नो शरीर हेऱ्यो। आफू पापरहित र ज्ञानी भएको उसले अनुभव गऱ्यो। पापमुक्त भई सुन्दर शरीर पाएको त्यो व्यक्ति एउटा खुट्टाले संसारभर दगुर्न सक्ने भयो ॥४५–४८॥

त्यसपछि नामले मात्र अर्धाङ्गी तर ज्ञानी बनेको त्यस पुरुषले प्रसन्न हुँदै भक्तिपूर्वक जलले शिवलिङ्गको पूजा गऱ्यो अनि हातले शिवजीको स्पर्श गऱ्यो। त्यसपछि शिवजीका दूतहरू आएर त्यसलाई विमानमा राखे। बाजा र मङ्गल गीतहरू बजाएर खुसी पार्दै त्यसलाई शिवलोकमा लगे। शिवलिङ्गको अनुग्रहबाट त्यही व्यक्ति प्रमथगणहरूको श्रेष्ठ नेता र सधैँ शिवजीको समीपमा बस्ने सेवक बन्यो ॥४९–५१॥

हे ब्राह्मण विरूपाक्ष ! अब तिमी यहाँबाट एक कोस टाढा रहेको गोखुरतीर्थको किनारमा अवस्थित गोखुरेश्वर क्षेत्रमा जाऊ। त्यहाँ गएर तिमी गोतीर्थमा स्नान गर। त्यसपछि तिम्रो शरीर सम्पूर्ण पापबाट मुक्त हुनेछ। त्यसपछि तुरुन्त भक्तिपूर्वक भगवान् शङ्करको पूजा गर, तिमीले जे चाहेका छौ त्यो फल पाउनेछौ ॥५२–५३॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा नन्दितीर्थ र नन्दिकेश्वरको माहात्म्यनामक एकसय दशौँ अध्याय पूरा भयो।

---

१०. नन्दीतीर्थजलाप्लुत्य, इति न.सं.पु.पाठः। ११. संप्राप्तश्चार्धाङ्गोऽसौ, इति न.सं.पु.पाठः।
१२. तनुं शुभां विकिल्वषा, इति न.सं.पु.पाठः।

# एकादशाधिकशततमोऽध्यायः

गोतीर्थगोखुरेश्वरशिवलिङ्गयोर्महमा

स्कन्द उवाच

नन्दितीर्थे ततः स्नात्वा तल्लिङ्गं पूजयन्मुने। सर्वजन्मोद्भवैः पापैरभिमुक्तो विरूपदृक् ॥१॥
भूयोऽगमत्समं तेन मुनिना स घटोद्भव। गोतीर्थस्य तटे सानौ यत्राऽऽस्ते गोखुरेश्वरः ॥२॥
माघशुक्लस्य चाऽष्टम्यां भक्तिपूर्वं घटोद्भव। गोतीर्थे स मुदा स्नात्वा गोखुरेशमपूपुजत् ॥३॥
सम्पूज्य विधिवल्लिङ्गं तन्निशायां च जागृतः[1]। ततः पप्रच्छ माहात्म्यं तल्लिङ्गतीर्थयोर्मुनिम् ॥४॥

विरूपाक्ष उवाच

गाखुरेशमिति प्रोक्तं भवता तत्र मे तदा। एतल्लिङ्गस्य नामाऽऽर्य माहात्म्यमस्य किं पुनः ॥५॥
गवां तीर्थस्य विप्रेश माहात्म्यञ्च विशेषतः। एते च[2] श्रोतुकामोऽहं वद मे मुनिपुङ्गव ॥६॥

नेमुनिरुवाच

बभूव कश्चिदाभीरो[3] गोरसैरुपजीवितः। गाश्च रक्षँस्तदा तस्थौ दधिकर्ण इति श्रुतः ॥७॥
तद्गावो रत्नकान्त्यां वै सस्नुर्दावप्रपीडिताः। वैशाखस्य तृतीयायां शुक्ले च कृत्तिकायुजि[4] ॥८॥
गाव उत्तीर्य नद्यास्ता गोष्ठेऽत्राऽऽगत्य वै तदा। दुग्धानि सुस्रुवुश्चाऽत्र पयस्विन्यः पृथक् पृथक् ॥९॥
उल्लेखयन्त्यश्च खुरैर्गावश्चरन्ति निर्भरम्। प्रस्राव्य दुग्धधारास्ता नित्यमेव पृथक् पृथक् ॥१०॥
अत्राऽधावत्स चाऽऽभीरः किमितीति वदन् हि तत्। प्रदर्शितुं तदा शीघ्रं समुत्थाय कुजाश्रयात् ॥११॥
मृदूल्लेखैः खुरैरत्र ददर्श लिङ्गमुत्तमम्। भूयश्चखान भूमिं स हस्तमात्रं लगुडकैः ॥१२॥

---

## अध्याय – १११

गोतीर्थ र गोखुरेश्वर शिवलिङ्गको महमा

कुमार स्वामीले भन्नुभयो – त्यसपछि विरूपाक्षले नन्दितीर्थमा स्नान गरेर त्यस लिङ्गको पूजा गरे, अनि उनी जन्मभरि गरेका सम्पूर्ण पापबाट मुक्त भए। हे अगस्त्य मुनि ! त्यसपछि ती विरूपाक्ष नेमुनिलाई साथमा लिएर गोखुरेश्वर महादेव जहाँ बस्नुहुन्थ्यो, त्यसै पर्वतमा रहेको गोतीर्थको तटमा गए। हे अगस्त्य मुनि ! माघशुक्ल अष्टमीका दिनमा उनले गोतीर्थमा आनन्दपूर्वक स्नान गरेर भक्तिपूर्वक गोखुरेश्वर महादेवको पूजा गरे। त्यस लिङ्गको विधिपूर्वक पूजा गरेर उनी राति जाग्राम बसे। त्यसै समयमा उनले त्यो लिङ्ग र तीर्थसम्बन्धी माहात्म्य नेमुनिसँग सोधे ॥१–४॥

विरूपाक्षले भने – हे मुनिश्रेष्ठ ! हजुरले मलाई जुन गोखुरेश्वरको कुरा बताउनुभएको थियो, त्यस लिङ्गको नाम के हो ? यसको महत्त्व के छ ? विशेष गरी गोतीर्थको के महत्त्व छ ? यी दुबै कुरा सुन्न चाहन्छु, मलाई बताउनुहोस् ॥५–६॥

नेमुनिले भन्नुभयो – अघि गाईको दूध, दही आदिबाट जीविका चलाउने कुनै दधिकर्ण नाम गरेको अहीर त्यहाँ बस्थ्यो। ऊ सधैँ त्यहाँ गाई हेर्दथ्यो। डढेलोले आत्तिएका गाईहरूले कृत्तिका नक्षत्रले युक्त वैशाखशुक्ल तृतीयाका दिन त्यहाँ आएर रत्नकान्ति नदीमा नुहाए। ती गाईहरू नदी तरेर त्यसैबेला यस गोठमा आए। प्रशस्त दूध भएका ती गाईहरूले त्यहाँ बेग्लाबेग्लै स्थानमा दूध चुहाए। खुरहरूले खोस्रदै ती गाईहरू बेग्लाबेग्लै दूधका धाराहरू चुहाएर त्यहाँ खूबसित चर्ने गर्थे। यस्तो दृश्य देखेर त्यो अहीर 'के रहेछ हँ' भन्दै त्यो दृश्य हेर्नका लागि रुखको आश्रयस्थलमा उठेर दगुर्‍यो। खुरहरूले माटो खनिएको त्यस ठाउँमा उसले शिवलिङ्ग देख्यो। त्यसपछि उसले लौराले एक हातजति भुइँ खन्यो ॥७–१२॥

---

१. विनिद्रवान्, इति न.सं.पु.पाठः।
२. एतौ च, इति न.सं.पु.पाठः।
३. आसीत्कश्चिद्धि चाभीरः, इति न.सं.पु.पाठः।
४. वैशाखस्य तृतीयायां शुक्ले भे कृत्तिकायुते, इति न.सं.पु.पाठः।

गाः प्रदुह्याऽनिशं क्षीरं पत्रपुटे विरूपदृक्। नित्यं स्नापितवान् भक्त्या लिङ्गोपरि शिवात्मना ॥१३॥
क्वचित्कालान्तरेऽत्राऽसौ पञ्चत्वं प्राप्तवान् द्विज। सम्पूज्य गोरसैर्नित्यं यावज्जीवप्रधारणम् ॥१४॥
प्रमथाश्च समागम्य पुष्पके तं तदा दधुः। निन्युः शिवपुरं दिव्यं सवाद्यैः पुष्पवर्षणैः ॥१५॥
स एव प्रमथानाञ्च गरिष्ठोऽभूद्विरूपदृक्। गोरसैः स्नापितं लिङ्गं तत्पुण्यस्य प्रभावतः ॥१६॥
ऋषिभिश्च समागत्य चैतल्लिङ्गं समर्चितम्। नित्यं स्नात्वा गवां तीर्थे प्रोक्तश्च गोखुरेश्वरः ॥१७॥
भूयो गच्छ विरूपाक्ष ! यत्राऽऽस्ते पाण्डुकेश्वरः। ऋक्षतीर्थेन सार्द्धञ्च ऋषिवृन्दप्रसेवितः ॥१८॥
योजनार्धे ह्यतो दूरे ऋक्षवदद्रिसानुतः। तत्र गमनमात्रेण हृदेनसा विमुच्यते ॥१९॥

ऋक्षाभिधाने सहसा च तीर्थे स्नात्वा तमीशञ्च समर्चय त्वम्।
रात्रौ विनिद्रो विधिवद्धि भूत्वा प्राप्नोषि कामं खलु यद् हृदिस्थम्[५] ॥२०॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां
गोतीर्थगोखुरेश्वरयोर्माहात्म्यं नामैकादशाधिकशततमोऽध्यायः ॥१११॥

---

हे विरूपाक्ष ! दिनदिनै दुनामा गाईको दूध दुहेर त्यसले त्यहाँ चढायो। शिवमा भक्ति राख्ने त्यस अहीरले शिवलिङ्गलाई बाँचुञ्जेल गोरसले स्नान गरायो। हे विरूपाक्ष ! बाँचुञ्जेल सधैँ गोरसले शिवलिङ्गको पूजा गरेको त्यो अहीर केही समयपछि मऱ्यो। बाजाका साथै फूलको वर्षा गरेर पुष्पक विमानमा राखी त्यसलाई प्रमथ आदि शिवगणहरूले शिवपुर लगे ॥१३–१५॥

हे विरूपाक्ष ! त्यसले गोरसले शिवजीको लिङ्गलाई स्नान गराएको थियो। त्यसै पुण्यको प्रभावले गर्दा त्यो अहीर प्रमथगणहरूको मुख्य भएर रह्यो। ऋषिहरूले आएर सधैँ गोतीर्थमा स्नान गरेर यस लिङ्गको पूजा गरे। त्यसैले यसलाई गोखुरेश्वर भनिएको हो ॥१६–१७॥

हे विरूपाक्ष ! अब तिमी जहाँ पाण्डुकेश्वर भगवान् ऋषिका समूहले सेवित भएर ऋक्षतीर्थमा बस्नुभएको छ, त्यसै ठाउँमा जाऊ। यहाँबाट दुई कोस टाढा ऋक्षवान् नाम गरेको पर्वत छ। त्यस पर्वतको फेदी हुँदै त्यहाँ जानाले मात्रै पनि मनबाट भएका सबै पापहरूबाट मुक्ति पाइन्छ। ऋक्ष नाम गरेको तीर्थमा स्नान गरेर तुरुन्त तिमीले भगवान् शङ्करको पूजा गर। रातमा विधिपूर्वक जाग्राम बसेर पूजा गऱ्यौ भने त्यस तीर्थबाट आफूले चाहेको फल तिमीले पाउनेछौ ॥१८–२०॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा गोतीर्थ र गोखुरेश्वरको माहात्म्यनामक
एकसय एघारौं अध्याय पूरा भयो।

---

५. तत्ततो यत्, इति न.सं.पु.पाठः।

# द्वादशाधिकशततमोऽध्यायः

भद्रतीर्थपाण्डुकेश्वरशिवलिङ्गयोर्महिमा

स्कन्द उवाच

गवां तीर्थे मुदा स्नात्वा गोखुरेशप्रपूजनात्। विंशत्या जन्मभिः प्राप्तैः पापैर्मुक्तो भवेज्जनः[1] ॥१॥
भूयोऽगमद्विरूपाक्षो मुनिना तेन वै सह। समाहृत्याऽऽशु तद्वाक्यं यत्रासीत् पाण्डुकेश्वरः ॥२॥
भद्रतीर्थजले स्नात्वा[2] पाण्डुकेशमपूपुजत्। तपःसितनवम्यां स भक्त्या पञ्चोपचारकैः ॥३॥
उपोष्याऽभ्यर्च्य तल्लिङ्गं तन्निशायां विरूपदृक्। पप्रच्छ नेमुनिं भूयो माहात्म्यं तीर्थलिङ्गयोः ॥४॥

विरूपाक्ष उवाच

नमस्ते मुनिशार्दूल ज्ञानदीपप्रकाशक। भवामि श्रोतुकामोऽहं माहात्म्यञ्च तयोः पुनः ॥५॥
एतल्लिङ्गस्य चोद्भूतिं तीर्थस्य च विशेषतः। प्रशंसनं मुने शीघ्रं वद मे सर्वविद् विभो ॥६॥

नेमुनिरुवाच

आसीत्पुरा द्विजश्रेष्ठः पाण्डुको नाम विश्रुतः। मरीचेरात्मजो धीरः सर्वसत्त्वदयापरः ॥७॥
परिभ्रम्य महीं पूर्णां तीर्थयात्रामटन्मुनिः। अत्रैव प्राप्तवान् वत्स ! विलङ्घ्य पर्वतान् तदा ॥८॥
रेविका च नदी पुण्या चाऽस्रवदद्रिसम्भवा। रेतोवती तथा श्रेष्ठा भद्रकूटसमुद्भवा ॥९॥
तयोरसौ हि सम्भेदे सस्नौ भद्रफलप्रदे। विधिना मुनिशार्दूल भद्रोपायेन चात्मनः ॥१०॥
भद्रतीर्थे सुविख्याते पुण्ये[3] स्नात्वा पुनर्द्विजः। अत्राऽऽराधितवान् रुद्रं जपोपहारकैस्तदा ॥११॥

---

## अध्याय - ११२

भद्रतीर्थ र पाण्डुकेश्वर शिवलिङ्गको महिमा

कुमारस्वामीले भन्नुभयो – गोतीर्थमा स्नान गरेर गोखुरेश्वर महादेवको पूजा गर्‍यो भने बीस जन्मसम्म गरेका पापबाट मुक्त भएर मानिस धर्मात्मा बन्दछ। त्यसपछि विरूपाक्ष नेमुनिको वचन अनुसरण गर्दै उहाँलाई साथमा लिएर पाण्डुकेश्वर भगवान् रहनुभएको ठाउँमा गए। उनले पहिले भद्रतीर्थको जलमा स्नान गरेर माघशुक्ल नवमीका दिन भक्तिपूर्वक पञ्चोपचार विधिले पाण्डुकेश्वर भगवान्को पूजा गरे। विरूपाक्षले भोकै बसेर लिङ्गको पूजा गरेपछि राति त्यस तीर्थ र लिङ्गको बारेमा फेरि नेमुनिसित सोधे ॥१-४॥

विरूपाक्षले भने – ज्ञानको दियो फैलाउने हे मुनिश्रेष्ठ ! हजुरबाट म ती दुई तीर्थको माहात्म्य सुन्न चाहन्छु। यो लिङ्ग र विशेष गरी तीर्थको उत्पत्ति कसरी भयो ? सम्पूर्ण वृत्तान्त जान्ने हे प्रभु ! मलाई यिनीहरूको माहात्म्य तुरुन्त बताइदिनुहोस् ॥५-६॥

नेमुनिले भन्नुभयो – अघि पाण्डुक नाम गरेका कुनै उच्च कोटिका ब्राह्मण थिए। मरीचिका छोरा भएर जन्मिएका ती ब्राह्मण सम्पूर्ण प्राणीहरूमाथि दया गर्दथे। हे बाबु ! तीर्थयात्राको क्रममा सम्पूर्ण पृथ्वी घुमेर पर्वतहरू नाघ्दै ती ब्राह्मण यसै ठाउँमा आइपुगे। यहाँ ऋक्षवान् पर्वतबाट पैदा भएकी रेविका नाम गरेकी नदी छन्, त्यस्तै भद्रकूटबाट पैदा भएकी रेतोवती नाम गरेकी नदी छन् ॥७-९॥

हे मुनिश्रेष्ठ ! उनले कल्याणदायक फल दिने ती दुईको सङ्गमस्थलमा आफ्नो कल्याणको कामना गरेर विधिपूर्वक स्नान गरे। भद्रतीर्थ नाम गरेको तीर्थमा स्नान गरिसकेपछि उनले जप तथा पूजासामग्रीद्वारा भगवान् शङ्करको यहाँ नै आराधना गरे ॥१०-११॥

---

१. विंशज्जन्मार्जितैः पापैः प्रमुक्तो धार्मिको भवेत्, इति न.सं.पु.पाठः। २. प्लाव्य, इति न.सं.पु.पाठः।
३. भद्रतीर्थ इतिख्यातस्तत्र, इति न.सं.पु.पाठः।

पौषकृष्णचतुर्दश्यां निशायां पाण्डुकः पुनः। विनिद्रः स्नातको भक्त्या जजाप तन्मनुं मुनिः ॥१२॥
तस्मादेतत्समुद्भूतं लिङ्गं त्रिभुवनेश्वरम्। अनेनाऽऽराधितं यस्मात्पाण्डुकेश्वरमाश्रुतम् ॥१३॥
अत्रैव च विमुक्तोऽभूदेतल्लिङ्गप्रपूजनात्। निर्वाणं प्राप्तवान् शम्भोः प्रसादादेव शूलिनः ॥१४॥
भूयः शृणु विरूपाक्ष मुक्तश्चाभूत्पुरा द्विज। शङ्कुकर्णो महादैत्यश्चैतदाप्तवरोत्तमः ॥१५॥
नारदवचनाच्चाऽसौ विन्ध्याचलादिहाऽऽगतः। एतत्तीर्थे मुदा स्नात्वा लिङ्गमेतदपूपुजत्[४] ॥१६॥
ददौ पाशुपतमस्त्रं रुद्रस्तस्मै वरोत्तमम्[५]। तद्भक्त्या तोषितोऽत्यन्तं त्रैलोक्यविजयाय च ॥१७॥
ततो वरं हि सम्प्राप्य[६] ह्यजयत्ककुभो द्रुतम्। कृत्वा राज्यञ्च चाऽत्रैव त्रिंशत्कोट्यसुरैः समम् ॥१८॥
जित्वा दिक्पालकानष्टौ सोऽगमत्त्रिदिवं पुनः। युयोध त्रिदशैः सार्द्धं विजयस्य समीहया[७] ॥१९॥
अभिद्रुत्य सुरानत्र शक्रपुरोगमान् द्विज। लुलुण्ठ सर्वशो द्रव्यमैरावतञ्च साम्प्रतम् ॥२०॥
द्रव्यान् प्रलुण्ठ्य नाकेऽसौ चाऽऽदायैरावतं पुनः। शङ्कुकर्णोऽसुरैः सार्द्धं त्वरितं स इहाऽऽययौ ॥२१॥
कतिचिद्वत्सरान् दैत्यश्चाऽत्र राज्यञ्चकार सः। ससुखं तद्वसु भुङ्क्त्वा दैत्यगणैः प्रसेवितः ॥२२॥
ततो देवा विरूपाक्ष ! ब्रह्माणं शरणं ययुः। न्यवेदयन् च[८] तच्चेष्टां त्वरितं विधयेऽमराः ॥२३॥
समाकर्ण्याऽऽशु तच्चेष्टां देवानां वचनं विधिः। भयदुःखेरितं तस्माद् व्याजहार शुभं वचः ॥२४॥

ब्रह्मोवाच

मा कुरुध्वं विषादं नु[९] त्रिदशास्तद्भयादपि। सर्वस्वलुण्ठनात्तस्माच्छक्रस्यैरावतस्य च ॥२५॥
तेनाऽवश्यं फलं देवाः प्राप्तव्यं तपसो द्रुतम्। पाण्डुकेशप्रसादाद्वै लब्धं फलमनुत्तमम् ॥२६॥
प्रतीकारा भविष्यन्ति कालान्ते त्रिदशा हि वः। विष्णोः प्रसादतः शक्र ऐरावतं लभेत सः[१०] ॥२७॥

---

पाण्डुकले पौषकृष्ण चतुर्दशीको रातमा स्नान गरेर जाग्राम बसी मौन बसी शिवजीको मन्त्र जपे। उनकै आराधनाबाट तीनै लोकका स्वामी भगवान् शङ्करको यो लिङ्ग प्रादुर्भाव भएको हो। पाण्डुकले आराधना गरेको हुँदा यस लिङ्गको नाम पाण्डुकेश्वर रहेको हो। भगवान् शङ्करको यस लिङ्गको पूजाको प्रभावले गर्दा पाण्डुक यसै ठाउँमा मुक्त भए। भगवान् शङ्करको अनुग्रहले ऊ शिवजीमा लीन भए ॥१२-१४॥

हे विरूपाक्ष ! अघि शङ्कुकर्ण नाम गरेको ठूलो दैत्य यसै लिङ्गको आराधनाबाट उत्तम वर प्राप्त गरी मुक्त भएको थियो, सुन। नारदको वचन सुनेर त्यो दैत्य विन्ध्याचल पर्वतबाट यहाँ आई त्यसले यस तीर्थमा प्रसन्न भएर स्नान गऱ्यो र भगवान् शङ्करको यस लिङ्गको पूजा गऱ्यो ॥१५-१६॥

भगवान् शङ्करले उसको भक्तिबाट अत्यन्त प्रसन्न भएर तीनै लोकको विजयका निमित्त उत्तम वरका रूपमा पाशुपतास्त्र दिनुभयो। भगवान् शङ्करबाट वर पाएर त्यसले तुरुन्त दिशाहरू जित्यो। उसले यहाँ तीस करोड राक्षसहरूका साथमा रही राज्य गऱ्यो। त्यो आठ दिक्पालहरूलाई जितेर त्यो स्वर्गतिर लाग्यो र स्वर्गलाई जित्ने इच्छाले उसले देवताहरूसँग युद्ध गऱ्यो ॥१७-१९॥

हे विरूपाक्ष ! उसले स्वर्गमा इन्द्र आदि गरिएका देवताहरूलाई लघारेर सबै सम्पत्ति र ऐरावत हात्तीसमेत लुटेर लियो। त्यो शङ्कुकर्ण स्वर्गमा द्रव्यहरू लुटेर ऐरावतलाई साथमा लिई राक्षसहरूका साथ तुरुन्त यहाँ आयो। त्यस दैत्यले यहाँ केही वर्ष सुखसँग दैत्यगणद्वारा सुसेवित भएर सम्पत्ति भोग गर्दै राज्य गऱ्यो। हे विरूपाक्ष ! त्यसपछि देवताहरू ब्रह्माजीको शरणमा गए। उनीहरूले तुरुन्त त्यस राक्षसको क्रियाकलाप ब्रह्माजीलाई निवेदन गरे ॥२०-२३॥

ब्रह्माजीले राक्षसबाट भयभीत र दुःखी बनेका देवताहरूको वचन सुनेर राक्षसका सबै क्रियाकलापहरूबारे अवगत भएपछि कल्याणकारक वचन बोल्नुभयो। हे देवता हो ! तिमीहरू त्यस राक्षसले इन्द्रको सम्पूर्ण सम्पत्ति र ऐरावत हात्ती लुट्यो भन्दै त्यसदेखि डराएर दुःखित नबन। हे देवता हो ! त्यसले तपस्या गरेको फल अवश्य पाउने नै थियो। पाण्डुकेश्वर भगवान्को कृपाबाट उसले उत्तम फल पाएको हो। हे देवता हो ! समय पुगेपछि प्रतीकारहरू हुनेछन्। विष्णुको अनुग्रहले इन्द्रले अवश्य पनि ऐरावत हात्ती पाउनेछन् ॥२४-२७॥

---

४. चैतल्लिङ्गमपूपुजत्, इति न.सं.पु.पाठः।
५. ददौ तस्मै तदा रुद्रः पाशुपतास्त्रं वरोत्तमम्, इति न.सं.पु.पाठः।
६. समालभ्य, इति न.सं.पु.पाठः।
७. तत्र जयस्य लिप्सया, इति न.सं.पु.पाठः।
८. निवेदन्ति स्म, इति न.सं.पु.पाठः।
९. मा मा विषादयध्वं नु, इति न.सं.पु.पाठः।
१०. शक्रः सत्यमैरावतं लभेत्, इति न.सं.पु.पाठः।

नेमुनिरुवाच

इत्युक्त्वा च ततो देवान् ब्रह्मा चाऽन्तर्दधे दिवि। विष्णुं ततः पुरोधाय समाजग्मुश्च[११] निर्जराः ॥२८॥
युयुधुरसुरा देवाः परस्परजयैषिणः। शस्त्रास्त्रक्षेपणैस्तीव्रं स्वैः स्वैः सैन्यैः समावृताः ॥२९॥
ववृषुर्बाणवर्षाणि देवसैन्येषु दानवाः। अन्धीभूता दिशश्चाऽत्र खड्गैर्जघ्नुश्च देवताः ॥३०॥
उत्तीर्य शरजालाँश्च गरुडः क्रोधमूर्च्छितः। अद्रिसानुं द्रुमान् ग्रावान् समादायाऽम्बराद्ययौ ॥३१॥
स ववर्षाऽम्बरात्तार्क्ष्यो दैत्यसैन्योपरि ध्रुवम्। चञ्चुपूर्णजलं तीव्रं पक्षवातेन पीडयन् ॥३२॥
पेतुर्भूमौ तदा दैत्या वज्रेणैव यथा द्रुमाः। व्यसवः पतिताः सर्वे दशानां कोटयः पुनः ॥३३॥
अवशिष्टाँश्च तान् शक्रः विष्णुश्चाऽन्ये सुराः पुनः। चक्राशनिशरैः खड्गैर्जघ्नुरामर्षणैर्द्रुतम् ॥३४॥
सम्प्रेक्ष्य पतितान् दैत्यान् शङ्कुकर्णो हि रुष्टवान्। अद्रिसानुं समादाय मायया व्योम्नि चाययौ ॥३५॥
तं प्रेक्ष्य विश्वकर्माऽऽशु देवानत्र न्यषेधयत्। दुद्रुवुर्देवताश्चाऽस्मात्त्यक्त्वा युद्धं दिशो द्रुतम् ॥३६॥
ततश्चिक्षेप देवेषु शङ्कुकर्णोऽद्रिशेखरम्। समागत्य पुनश्चाऽत्र चखान गिरिशेखरम्[१२] ॥३७॥
चिक्षेप स पुनः सानुं देवसैन्ये पुनः पुनः। चिक्षेप विष्णुमुद्दिश्य पाशुपतास्त्रमाशु च ॥३८॥
क्रोधाविष्टस्ततो विष्णुश्चिक्षेपाऽऽशु सुदर्शनम्। पाशुपतास्त्रमुद्दिश्य प्रज्वलद्[१३] गगने गतम् ॥३९॥
चक्रं पाशुपतास्त्रं ते युयुधतुर्विहायसि। जघ्नतुस्ते मिथश्चाऽस्त्रैः द्योतयती दिशोऽर्चिभिः ॥४०॥

---

नेमुनिले भन्नुभयो– यति भनेर ब्रह्मा आकाशमा अन्तर्धान हुनुभयो। देवताहरू पनि विष्णुलाई अगाडि लगाएर यहाँ आए। परस्पर विजयको आकाङ्क्षा राख्ने देवता र राक्षसहरू आ–आफ्ना सेनाले युक्त भएर शस्त्र तथा अस्त्रहरू खूबसित प्रहार गर्दै लड्न लागे। दानवहरूले देवताको सेनामाथि बाणहरूको वर्षा गरे भने देवताहरूले पनि तिनीहरूलाई तरवारले हिर्काए। यसरी युद्धले सम्पूर्ण दिशा अँध्यारा भए। बाणबाट उम्किएर गरुडले रीसले मूर्च्छित हुँदै पहाडका टाकुराहरू, वृक्षहरू र पत्थरहरू लिएर आकाशबाट आए ॥२८–३१॥

गरुडले दैत्यहरूको सेनामाथि थुम्काहरू फाले, पखेटाले हिर्काउँदै चुच्चामा राखेका पानीको वर्षा गरे। त्यसबेला वज्रप्रहारले रुख ढले जस्तै दश करोड दैत्यहरू प्राण छोडेर भूमिमा पछारिए। अत्यन्त क्रुद्ध भएर इन्द्र, विष्णु र अरु देवताहरूले बाँकी रहेका ती दैत्यहरूलाई चक्र, वज्र, बाण तथा खड्गले हिर्काए। दैत्यहरू त्यसरी ढलेको देखेर शङ्कुकर्ण रिसाएर मायाजाल रच्दै पहाडका टाकुराहरू बोकी आकाशमा आयो ॥३२–३५॥

त्यो देखेर सबै देवताहरू छिटो–छिटो युद्धस्थल छाडेर विभिन्न दिशातिर भाग्न थाले। देवताहरू भाग्न लागेको देखेर विश्वकर्माले उनीहरूलाई भाग्न दिएनन्। त्यसपछि शङ्कुकर्णले देवताहरूमाथि पहाडको टाकुरो फ्याँक्यो। फेरि आएर त्यसले अर्को पहाडको टाकुरो उखेल्यो। त्यसपछि उसले देवताका सेनामाथि बारम्बार पहाडका टाकुराहरूद्वारा प्रहार गर्‍यो। उसले विष्णुलाई लक्ष्य गर्दै तुरुन्त पाशुपतास्त्र छोड्यो ॥३६–३८॥

रिसाउँदै भगवान् विष्णुले पनि बल्दै आकाशमा उडेको पाशुपतास्त्रलाई लक्ष्य गरेर तुरुन्त सुदर्शनचक्र छोड्नुभयो। सुदर्शनचक्र र पाशुपतास्त्र आकाशमा लड्न थाले। आफ्नो कान्तिले दिशाहरूलाई उज्यालो पार्दै विभिन्न शस्त्रहरूद्वारा ती दुई हानाहान गर्न थाले ॥३९–४०॥

---

११. चात्राययुश्च, इति न.सं.पु.पाठः।
१२. उच्चखानाद्रिशेखरम्, इति न.सं.पु.पाठः।
१३. ज्वलन्तम्, इति न.सं.पु.पाठः।
१४. ते, इति न.सं.पु.पाठः।
१५. ...ज्वलनोदिते, इति न.सं.पु.पाठः।

दुद्राव देवसैन्यं तत्[१४] प्रेक्ष्य भयातुरं दिशः। प्रलयानलसङ्काशैरद्भुतज्वलनैर्युतम्[१५] ॥४१॥
ददर्श शङ्करो विष्णुर्जगद्धर्त्तुं समुद्यते। हाहाकारे जगद् भूतं क्षयकाले यथा पुरा ॥४२॥
ततो रुद्रश्च विष्णुश्च ह्युत्पेततुश्च पुष्करे। जगृहतुस्तदा ते हि स्वं स्वञ्चास्त्रं जगत्प्रभू ॥४३॥
भूयो हन्तुं द्रुतं दैत्यं प्रचक्रे विष्णुरव्ययः। ततो व्याचष्ट रुद्रो वै वचनं श्रीहरिं तदा ॥४४॥

रुद्र उवाच

भो विष्णो ! भवता चैष हन्तव्यो न कदापि च। मया दत्तो वरश्चास्मै चिरजीवी भवेति वै[१६] ॥४५॥
शक्रो धृत्वा[१७] स्वकं वाहं गच्छतु त्रिदिवं सुरैः। विष्णो ! गच्छ समं तेन दत्त्वाऽस्मै चाऽभिषेचनम्[१८] ॥४६॥

नेमुनिरुवाच

वचो निशम्य रुद्रस्य देवाश्च प्रमथास्तदा। अत्राऽऽययुर्मुदा वाद्यैः कर्तुं तस्याऽभिषेचनम्[१९] ॥४७॥
एतत्तीर्थजलैस्तस्मै जाम्बूनदघटोद्धृतैः। अभिषेकं ददुर्देवा गीतवाद्यैः समादृताः ॥४८॥
ऐरावतं समारुह्य ययौ शक्रः सुरैः सह। गरुडस्थो ययौ विष्णुर्वैकुण्ठञ्च विमानगैः ॥४९॥
शङ्कुकर्णं विमानस्थं निन्युः शिवपुरं परम्। प्रमथा गीतवाद्यैस्तं रुद्राज्ञया प्रसेव्य च ॥५०॥
एतल्लिङ्गप्रसादात् सोऽभवद्[२०] विरूपदृक् सुखी। अद्यापि शङ्कुकर्णोऽपि रुद्रस्याऽनुचरो गणः ॥५१॥
नारदाख्ये महातीर्थे चेतो याम्यदिशि[२१] व्रज। व्योमशृङ्गाद्रिसानौ त्वं स्नात्वा मुनिं समर्चय ॥५२॥
स्नानात्तत्र भवेत्[२२] पुण्यमश्वमेधाद्युदद्भवम्। अपवित्रोऽपि यः स्नातो भवेद्धि संयतो द्रुतम् ॥५३॥

---

प्रलयकालको आगोझैं खूबसित बलिरहेका ती दुई अस्त्रलाई देखेर डरले आत्तिएका देवसैन्य विभिन्न दिशामा भाग्न थाल्यो। भगवान् विष्णु र शङ्करले संसारको संहारका लागि तयार भएका ती दुई अस्त्रलाई देख्नुभयो। अघि प्रलयकालमा जस्तै संसारमा हाहाकार मच्चियो। त्यसपछि भगवान् शङ्कर र विष्णु आकाशमा उफ्रनुभयो। संसारका स्वामी उहाँहरूले आ-आफ्नो अस्त्र समात्नुभयो। अविनाशी विष्णु दैत्यहरूलाई मार्न तुरुन्त तत्पर हुनुभयो। त्यसपछि भगवान् शङ्करले विष्णुलाई भन्नुभयो ॥४१-४४॥

शङ्करले भन्नुभयो – हे विष्णु ! यस दैत्यलाई मैले धेरै समयसम्म बाँच्ने वर दिएको हुनाले तपाईंले पनि यस दैत्यलाई कहिले पनि मार्न पाउनुहुन्न। इन्द्र आफ्नो वाहन लिएर देवताहरूका साथ स्वर्गमा जाऊन्। हे विष्णु ! यसलाई यसै ठाउँमा अभिषेक दिएर तपाईं पनि जानुहोस् ॥४५ -४६॥

नेमुनिले भन्नुभयो – यसरी भगवान् शङ्करले भनेको सुनेर देवता र प्रमथगणहरू खुसी हुँदै बाजा लिएर त्यस दैत्यलाई अभिषेक गर्न त्यहाँ आए। उनीहरूले गीत गाउँदै, बाजा बजाउँदै सुनका घडाहरूमा राखेका तीर्थका जलले ससम्मान त्यसको अभिषेक गरे। त्यसलाई अभिषेक दिएर ऐरावत हात्तीमा चढेर इन्द्र विमानचारी देवताहरूका साथ स्वर्ग गए। गरुडमा चढेका विष्णु पनि वैकुण्ठतिर जानुभयो। प्रमथगणहरूले भगवान् शङ्करको निर्देशन अनुसार गीत र बाजाद्वारा सम्मान गर्दै शङ्कुकर्णलाई विमानमा राखेर उत्तम शिवलोकमा लगे ॥४७-५०॥

यसै लिङ्गको अनुग्रहबाट शङ्कुकर्ण आज पनि सुखी भएर बसेको छ। जसले यस तीर्थमा स्नान गर्छ त्यो तुरुन्त जितेन्द्रिय बन्छ। हे विरूपाक्ष ! अब तिमी यहाँबाट दक्षिण दिशामा रहेको व्योमशृङ्ग नाम गरेको पहाडको टाकुरामा अवस्थित नारद महातीर्थमा जाऊ। त्यहाँ स्नान गरेर ऋषिको पूजा गर। त्यहाँ स्नान गऱ्यो भने अश्वमेध यज्ञ गर्दा प्राप्त हुने सबै यज्ञफल पाउन सकिन्छ। त्यहाँ स्नान गरे अपवित्र व्यक्ति पनि चाँडै नै बुद्धिमान् हुन्छ ॥५१-५३॥

---

१४. ते, इति न.सं.पु.पाठः।
१५. .....ज्वलनोदिते, इति न.सं.पु.पाठः।
१६. वरश्चाऽस्मिन् चिरञ्जीवी च मे पुनः
१७. गृह्य, इति न.सं.पु.पाठः।
१८. समञ्चात्र चास्मै तत्त्वाभिषेचनम्, इति न.सं.पु.पाठः।
१९. वाद्यैस्तस्मै समभिषेचितुम्, इति न.सं.पु.पाठः।
२०. स भवेत्, इति न.सं.पु.पाठः।
२१. चातो याम्ये दिशि, इति न.सं.पु.पाठः।
२२. लभेत्, इति न.सं.पु.पाठः।

भूयो गच्छ विरूपाक्ष ! चित्रकूटेश्वरो विभुः । अतो योजनदूरे च वारुण्यां[२३] दिशि सांप्रतम् ॥५४॥
स्नात्वा गालवतीर्थे त्वं कूटेश्वरं समर्चय । तत्रैव वाञ्छितं कामं प्राप्स्यसि त्वं[२४] न संशयः ॥५५॥
एतद्धि तुभ्यं कथितं मया वै माहात्म्यमेतस्य च शूलिनोऽद्य ।
भद्राख्यतीर्थस्य विशेषतश्च भूयश्च वक्ष्यामि च तत्र ते तत् ॥५६॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां
भद्रतीर्थपाण्डुकेश्वरयोर्माहात्म्यं नाम द्वादशाधिकशततमोऽध्यायः ॥११२॥

---

हे विरूपाक्ष ! अब तिमी यहाँबाट चार कोस टाढा पश्चिम दिशामा जहाँ चित्रकूटेश्वर भगवान् रहनुभएको छ, त्यहाँ जाऊ । त्यस स्थान पुगेर गालव तीर्थमा स्नान गरेर कूटेश्वर भगवान्को पूजा गर । त्यहाँ तिमीले चाहेको फल पाउनेछौ, यसमा शङ्का छैन । मैले तिमीलाई भगवान् पाण्डुकेश्वर शङ्करको माहात्म्य तथा विशेष गरी भद्रतीर्थको माहात्म्य बताएँ । रुद्रतीर्थको त्यो विशेष माहात्म्य म फेरि तिमीलाई भन्नेछु ॥५४–५६॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा भद्रतीर्थ र पाण्डुकेश्वरको माहात्म्यनामक
एकसय बाह्रौं अध्याय पूरा भयो ।

---

२३. वारुणे, इति न.सं.पु.पाठः । २४. लभिष्यसि, इति न.सं.पु.पाठः ।

# त्रयोदशाधिकशततमोऽध्यायः

## गालवतीर्थकूटेश्वरशिवलिङ्गयोर्महिमा

स्कन्द उवाच

स्नात्वा तत्र विरूपाक्षः प्राप्तवान्[1] भद्रमात्मनः। प्रभुत्वं लब्धवान् भूयः पाण्डुकेशप्रसादतः ॥१॥

ततोऽगमद् द्विजोऽगस्त्य ! यत्र कूटेश्वरो विभुः। सस्नौ गालवतीर्थेऽसौ विधिवद् भक्तितो मुदा ॥२॥

तपःसिते दशम्याञ्च स्नात्वा तत्र विरूपदृक्। अत्र कूटं समारुह्य कूटेश्वरमपूपुजत् ॥३॥

सम्पूज्य विधिवल्लिङ्गं नक्तं भक्त्वा घटोद्भव। अपृच्छल्लिङ्गमाहात्म्यं तीर्थस्य नेमुनिं हि स ॥४॥

विरूपाक्ष उवाच

नमस्ते भगवन्भूयः सर्ववार्त्ताविशारद। भवतः श्रोतुकामोऽहं माहात्म्यमेतयोर्ध्रुवम् ॥५॥

समुद्भूतं कथं[2] लिङ्गं केन प्रकाशितं पुनः। तीर्थस्य च विशेषेण वद मे नेमुनेऽधुना ॥६॥

नेमुनिरुवाच

आसीत्पुरा मुनिर्विप्र ! गालवो नाम विश्रुतः। स्वेच्छया च तपः कर्तुमिहैव प्राप्तवाँस्तदा ॥७॥

नदी गण्डाद्रिसंभूता गण्डवतीति विश्रुता। श्वेतकान्तिर्नदी पुण्या तयोर्योगे महाफलम् ॥८॥

कृष्णाष्टम्याञ्च माघस्य सस्नौ तत्र यथाविधि। समुपास्य तदा सन्ध्यामारुहदेनमाशु च ॥९॥

तत्र स्नातं[3] मुदा पूर्वं गालवमुनिना द्विज। तस्माद् गालवतीर्थेति प्रोक्तञ्च मुनिभिः पुरा ॥१०॥

स्नातकश्चाऽत्र कूटं स चैतदारुह्य भक्तितः। आराधयन् शिवं तस्थौ श्रद्धया[4] गालवो द्विज ॥११॥

---

## अध्याय – ११३

### गालवतीर्थ र कूटेश्वर शिवलिङ्गको महिमा

कार्तिक स्वामीले भन्नुभयो – त्यहाँ स्नान गरेर विरूपाक्षले आत्मकल्याण प्राप्त गरे भने पाण्डुकेश्वर भगवान्को अनुग्रहबाट उनी सामर्थ्यवान् भए। हे अगस्त्य मुनि ! त्यसपछि विरूपाक्ष कूटेश्वर भगवान् बस्नुभएको क्षेत्रमा गए। उनले त्यहाँ रहेको गालव तीर्थमा विधि अनुसार भक्तिपूर्वक स्नान गरे। माघशुक्ल दशमीका दिन त्यस तीर्थमा स्नान गरेर विरूपाक्षले त्यस पहाडको शिखरमा चढेर कूटेश्वर भगवान्को पूजा गरे। हे अगस्त्य मुनि ! उनले विधिपूर्वक भक्तियुक्त भई त्यस लिङ्गको पूजा गरिसकेपछि रातमा नेमुनिसित शिवलिङ्ग र तीर्थको माहात्म्यसम्बन्धी प्रश्न गरे ॥१–४॥

विरूपाक्षले भने – सम्पूर्ण वृत्तान्तका ज्ञाता हे नेमुनि ! म हजुरलाई फेरि पनि नमस्कार गर्छु। यस लिङ्गको उत्पत्ति कसरी भयो ? कसले यसलाई प्रकाशमा ल्यायो ? विशेष गरी यो तीर्थको महत्त्व के छ ? हे नेमुनि ! यी सबै कुरा म हजुरबाट सुन्न चाहन्छु, मलाई अहिले नै बताइदिनुहोस् ॥५–६॥

नेमुनिले भन्नुभयो – हे विरूपाक्ष ! अघि गालव नाम गरेका ऋषि थिए। उनी आफ्नो इच्छा अनुसार तपस्या गर्न यसै ठाउँमा आए। गण्ड पर्वतबाट निस्किएकी गण्डवती नामकी नदी छन्। त्यस्तै श्वेतकान्ति नाम गरेकी पवित्र अर्की नदी छन्। ती दुईको सङ्गममा पुण्य गरेको ठूलो फल प्राप्त हुन्छ। विरूपाक्षले माघकृष्ण अष्टमीका दिन त्यस तीर्थमा विधिपूर्वक स्नान गरे, सन्ध्यावन्दन गरे र तुरुन्त यस पर्वतमा आरोहण गरे। अघि गालव ऋषिले यस तीर्थमा स्नान गरेको हुनाले ऋषिहरूले यसलाई गालव तीर्थ भने। गालव ऋषिले यस तीर्थमा स्नान गरेर शिखरमा चढे। अनि शिवजीको आराधना गरेर यही ठाउँमा बसे ॥७–११॥

---

१. अलभत्, इति न.सं.पु.पाठः।
२. कथं समुद्भवम्, इति न.सं.पु.पाठः।
३. स्नात्वा, इति न.सं.पु.पाठः।
४. अत्रैव, इति न.सं.पु.पाठः।

नवम्यां तन्निशायाञ्च लिङ्गस्यास्य समुद्भवः[५] । ध्यायमाने समभ्यर्च्य गालवे मुनिसत्तमे ॥१२॥
समालोक्य मुनिर्लिङ्गं भक्त्या पूजितवान् मुदा । स्तुत्वा परिक्रमन् भूयो ननामाङ्गैर्मुहुर्मुहुः ॥१३॥
ईश्वरेण वरस्तस्मै दत्तो मोक्षः सुदर्ल्लभः[६] । तद्भक्त्या तोषितेनार्य ह्यञ्जसा खलु शूलिना ॥१४॥
किञ्चित्कालान्तरे सोऽपि निर्वाणं लब्धवान्मुनिः । एतल्लिङ्गं तदद्यापि देवर्षिभिः प्रसेवितम् ॥१५॥
भुक्तिमुक्तिप्रदं साक्षात्पूजकेभ्यो न संशयः । शैलारोहणमात्रेण भूयः पापं विनश्यति ॥१६॥
गालवस्य च तीर्थे यः स्नात्वा पश्यति शूलिनम् । पञ्चजन्मार्जितैः पापैः स मुक्तो नात्र संशयः ॥१७॥
भूयः शृणु प्रवक्ष्यामि मुक्तः कश्चिन्नृपोत्तमः । जातिस्मरणमास्थाय लिङ्गस्यास्य प्रदर्शनात्[७] ॥१८॥
विराटाधिपतिर्भूपः सुदर्शन इति श्रुतः । यौवनस्थो[८] रतिप्रीतो राजसीं बुद्धिमाश्रितः ॥१९॥
स कदाचिद्दिने भूपो मृगयां गतवान् द्विज । स्वसैन्यैर्धन्विभिः सार्द्धं वनाद्वनान्तरं गतः ॥२०॥
ददर्श कृष्णसारं स चरन्तं गिरिशेखरे । आकर्णमुद्गतं बाणं हन्तुं प्रचक्रमे च तम् ॥२१॥
हयावतरणात् शब्दात् स ददर्श धनुर्धरम्[९] । लङ्घयित्वाऽभिदुद्राव कन्दराः पर्वतानपि[१०] ॥२२॥
नृपस्तदनु दुद्राव तं हन्तुञ्च वनाद्वनम् । अत्रैव प्राप्तवान् विप्र ! स मृगो नृपतिस्तथा ॥२३॥
उत्प्लवेनास्पृशल्लिङ्गमेतन्मृगश्च तद्भयात् । स जातिस्मरणं प्राप्य तस्मादुवाच सत्वरम् ॥२४॥

---

मुनिश्रेष्ठ गालव पूजा गरेर ध्यानमग्न भएको अवस्थामा नवमीको रातमा यस लिङ्गको प्रादुर्भाव भयो। लिङ्ग प्रकट भएको देखेर ऋषिले भक्तिपूर्वक प्रसन्न हुँदै पूजा गरे। त्यसपछि स्तुति गरेर बारम्बार परिक्रमा गर्दै उनले सबै अङ्ग भुकाएर नमस्कार गरे। भक्तिबाट प्रसन्न भएका त्रिशूलधारी भगवान् शङ्करले ती ऋषिलाई दुर्लभ मोक्ष प्रदान गर्नुभयो ॥१२-१४॥

केही समयपछि ती ऋषि मुक्त भए। देवताहरूले त्यस समयदेखि आजसम्म पनि यस लिङ्गको सेवा गर्दै आएका छन्। पूजा गर्ने व्यक्तिलाई यस लिङ्गले साक्षात् भुक्ति तथा मुक्ति दिन्छ, यसमा सन्देह छैन। यो पहाड चढ्यो भने मात्रै पनि पाप नाश हुन्छ। जसले गालव तीर्थमा स्नान गरेर यहाँ रहेका भगवान् शङ्करको दर्शन गर्छ त्यो पाँच जन्मसम्म गरेका पापबाट मुक्त हुन्छ, यसमा शङ्का छैन ॥१५-१७॥

म फेरि बताउँछु, सुन – कुनै उत्तम राजाले यस शिवलिङ्गको दर्शन गरेका थिए। त्यसबाट पूर्वजन्मको सबै वृत्तान्त थाहा पाएका उनी मुक्त भए। विराट् नाम गरेको राज्यमा सुदर्शन नाम गरेका युवक राजा थिए। शृङ्गार गर्न मन पराउने उनको बुद्धि राजसी प्रवृत्तिमा लागेको थियो। हे विरूपाक्ष ! कुनै दिन ती राजा शिकार खेल्न निस्किए। धनुर्धारी आफ्ना फौजहरूलाई साथमा लिएर उनी एक वनबाट अर्को वनमा गए ॥१८-२०॥

ती राजाले पहाडको टाकुरामा चर्न लागेको कृष्णसार मृग देखे। उनले धनुषलाई कानसम्म तानेर त्यसलाई बाणले हिर्काउन लागे । त्यस मृगले घोडाको आवाज सुनेर हेर्दा धनुष लिएका राजालाई देख्यो। त्यसपछि त्यो एउटा पर्वतबाट अर्को पर्वत हुँदै हाम फालेर गुफा भएका पर्वतहरूतिर भाग्यो। हे विरूपाक्ष ! राजा पनि त्यस मृगलाई मार्नका लागि एउटा वनबाट अर्को वन हुँदै पछिपछि दौडिए। यसपछि ती दुबै यही तीर्थमा आइपुगे। राजाको डरले उफ्रिएर भाग्दा मृगले शिवलिङ्गलाई छुन पुग्यो र उसले पूर्वजन्मको सबै वृत्तान्त थाहा पायो अनि राजालाई तुरुन्त भन्यो ॥२१-२४॥

---

५. ईश्वरेण वरं तस्मै दत्तं मोक्षं सुदुर्ल्लभम्, इति न.सं.पु.पाठः।
६. एतल्लिङ्गं समुद्भवम्, इति न.सं.पु.पाठः।
७. एतल्लिङ्गप्रदर्शनात्, इति न.सं.पु.पाठः।
८. सुदर्शनो नाम विश्रुतः। युवावस्थो, इति न.सं.पु.पाठः।
९. हयावतरनाच्छब्दात्सोऽप्यपश्यद्धनुर्धरम्, इति न.सं.पु.पाठः।
१०. अभिदुद्राव लङ्घ्याद्रिं सकन्दरांश्च पर्वतान्, इति न.सं.पु.पाठः
११. तस्मादुवाच, इति न.सं.पु.पाठः।

कृष्णसार उवाच

राजन् ! शृणु वचो मे त्वं हितप्रसूचकं तव। ततो विमृश्य माऽन्वाऽत्र हनिष्यसि यथासुखम् ॥२५।
पूर्वजन्मन्यहं राजा चाऽभवं कोशलाधिपः। तत्र राज्यं सुखञ्चक्रे सर्वभोग्यैर्महासुखम् ॥२६॥
एकदा दिवसे राजन् ! दोषहीनो[११] महामृगः। मया हतश्चरन् सानौ मृगयायां भवानिव ॥२७॥
तत्पापेन मृगो भूत्वा विचरामि वनाद्वनम्। सोऽपि धनुर्धरो भूत्वा हतवान् मां सहस्रधा ॥२८॥
एतल्लिङ्गप्रसादाद्वै जातिस्मरणतां गतः। उत्प्लवेन च केनापि नाहं दृष्टो हि तद्भयात्[१२] ॥२९॥
त्यक्त्वा चेमां तनुं राजन् ! गमिष्यामि परं पदम्। गालवाख्येऽधुना तीर्थे पश्य पश्य नृपोत्तम ॥३०॥

नेमुनिरुवाच

परिक्रम्य मृगो लिङ्गं मूर्ध्ना स्पृश्य ननाम च। अवतार शैलाद्वै गालवतीर्थमाशु च ॥३१॥
सोऽपि राजा ययौ शीघ्रं तद् द्रष्टुं तत्र कौतुकम्। निशम्य तद्वचश्चित्रं परित्यज्य स्वकार्मुकम् ॥३२॥
कश्चिन्म्लेच्छश्च तं तत्र मृगं जघान पत्रिणा। तत्तीर्थजलपाने वै पूर्ववैरधनुर्धरः ॥३३॥
वाणाघातव्रणैर्युक्तः[१३] पञ्चत्वं प्राप्तवान् मृगः। म्लेच्छस्तन्मांसमादाय स्वाश्रमं हि ययौ मुदा ॥३४॥
तत्तनुञ्च परित्यज्य प्राप्तवान् भूपविग्रहम्। अभूत्स वै विरूपाक्ष ! पूर्वात्त्रिगुणसुन्दरः ॥३५॥
आययुः शिवदूताश्च पुष्पकपाणयस्तदा। तमास्थाय च तद्याने निन्युः शिवपुरं महत् ॥३६॥
पुष्पवर्षैर्महच्चित्रैर्गीतवाद्यैर्महोत्सवैः। चामरैः सेवितं तञ्च[१४] नृपोऽपश्यद्धि यानगम् ॥३७॥
तमाश्चर्यं समालोक्य नृपोऽप्यसौ विरक्तवान्। एतत्तीर्थे द्रुतं स्नात्वा चात्रागमच्छिलोच्चये ॥३८॥
सुखं दुःखं जहौ राजा मृगस्य वचनात्तदा। राज्याङ्गानि विरज्यासौ[१५] कृत्वा सत्यञ्च तद्वचः ॥३९॥

---

कृष्णसार मृगले भन्यो – पूर्वजन्ममा म कोशल देशको राजा थिएँ। त्यहाँ मैले आनन्द र सुखसित सबै भोग्य पदार्थको भोग गर्दै राज्य गरेँ। हे राजन् ! एकदिन तपाईं जस्तै शिकार खेल्न गएको बेलामा मैले पर्वतको शिखरमा चरिरहेको निरपराध मृगलाई मारेँ। त्यही पापले गर्दा म मृग भएर म वन–वन डुलिरहेको छु। त्यस मृगले पनि धनुर्धारी भएर मलाई हजारौँ पटक मारिसक्यो। उफ्रिएर स्पर्श गर्दा यस शिवलिङ्गको अनुग्रहबाट मैले पूर्वजन्मको ज्ञान पाएँ। उहाँलाई मैले देखेको छैन। हे राजन् ! यो शरीरलाई छाडेर म अहिले नै यस गालव तीर्थमा उत्तम गति प्राप्त गर्नेछु, हेरिरहनुहोस् ॥२६–३०॥

नेमुनिले भन्नुभयो – त्यसपछि त्यस मृगले लिङ्गको परिक्रमा गऱ्यो, लिङ्ग स्पर्श गरेर शिरले प्रणाम गऱ्यो र तुरुन्त गालव तीर्थमा ओर्लियो। ती राजाले पनि उसको विचित्र वचन सुनेपछि त्यो रमाइलो दृश्य हेर्न राजा आफ्नो धनुष त्यहीँ मिल्काएर तुरुन्तै त्यहाँ आए। पूर्वजन्मको वैरी धनुर्धारी कुनै म्लेच्छले तीर्थमा गएर जल पिउन लागेको बेलामा त्यस मृगमाथि बाण प्रहार गऱ्यो। त्यो मृग बाणबाट लागेको घाउलाई सहन नसकेर मऱ्यो। म्लेच्छ त्यस मृगको मासु लिएर प्रसन्न हुँदै आफ्नो घरतिर लाग्यो ॥३१–३४॥

हे विरूपाक्ष ! त्यस मृगले त्यो शरीर छाडी राजाको शरीर लियो। त्यो अघिभन्दा तीन गुणा बढी सुन्दर भयो। शिवजीका दूतहरू पुष्पक विमान लिएर त्यहाँ आए। उसलाई त्यसै यानमा राखेर उत्तम शिवलोकमा लगे। ती राजाले फूलको वर्षा गरेर विचित्र किसिमका गीत गाउँदै, बाजा बजाउँदै ठूलो उत्सवका साथ चामर हल्लाएर त्यसलाई यानमा राखी लैजान लागेको देखे। आश्चर्यपूर्ण त्यो घटना देखेपछि राजा पनि विरक्त भए र तुरुन्त यस तीर्थमा स्नान गरेर उनी त्यस पर्वतको टाकुरामा आए। त्यसपछि राजाले मृगको वचनलाई सत्य ठानी सुखदुःख सबै छोडिदिए, विरक्त भएर राज्यका अङ्गहरूलाई पनि त्यागे ॥३५–३९॥

---

१२. निरपराधः, इति न.सं.पु.पाठः।
१३. उत्प्लवेनाहमेतद्भो स्पर्शितो न च दर्शितः, इति न.सं.पु.पाठः।
१४. वाणाघातव्रणासह्य, इति न.सं.पु.पाठः।
१५. चामरैर्भूयमानं तम्, इति न.सं.पु.पाठः।

एतल्लिङ्गं मुदा राजा भक्त्या च समुपासते। संसारं भाजनं ज्ञात्वा स्वप्नवत्सुखदुःखयोः ॥४०॥
सोऽपि पञ्चत्वमापन्नः चात्रैकाब्दान्तरे नृपः। समर्च्य श्रद्धया लिङ्गमस्मिन् तीर्थे सुसेवितम्[१६] ॥४१॥
स्वविग्रहविनिर्मुक्तं तद्याने प्रमथा द्रुतम्। आदरेण तमास्थाय निन्युः शिवपुरं परम् ॥४२॥
दुर्मुखः सुमुखस्तौ च ह्यभूतां रुद्रपार्श्वगौ। मृगाङ्गं नरदेहञ्च विमुच्याऽपूर्वविग्रहौ ॥४३॥
तौ माघशुक्लपञ्चम्यामेतल्लिङ्गप्रदर्शनात्। मृगनरतनू तस्मादभूतां प्रमथाधिपौ ॥४४॥
सुदुर्लभञ्च लोकानामेतल्लिङ्गस्य दर्शनम्। भुक्तिमुक्तिप्रदं साक्षाद् दर्शनात्स्पर्शनाद्धि तत् ॥४५॥
भूयो गच्छ विरूपाक्ष ! दिश्युदीच्यां च पर्यटन्[१७]। सार्द्धे च योजने दूरे यत्रास्ते चासितेश्वरः ॥४६॥
संस्नायासिततीर्थे त्वं सम्पूजयासितेश्वरम्। बहुयोजनञ्च त्वं गन्तु शक्तो भविष्यसि ध्रुवम् ॥४७॥
द्वादश्यां माघशुक्लस्य स्नातव्यं तत्र सर्वदा। जागरया[१८] ततो रुद्रः पूजनीयो महोत्सवैः ॥४८॥
प्रोक्तं माहात्म्यं खलु तेऽधुना श्रीकूटेश्वरस्यार्य विरूपनेत्र।
भूयश्च वक्ष्यामि माहात्म्यमन्यत् तत्रैव धीमन् ह्यसितेश्वरस्य ॥४९॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां गालवतीर्थकूटेश्वरयोर्माहात्म्यं नाम त्रयोदशाधिकशततमोऽध्यायः ॥११३॥

---

उनले संसारलाई स्वप्नजस्तै सुख र दुःखको मुहान सम्झिएर भक्तिपूर्वक प्रसन्न हुँदै यस लिङ्गको उपासना गरे। सधैँ यस लिङ्गको पूजा गरेर समय बिताइरहेका ती राजा पनि एक वर्षपछि मरे। शरीरबाट मुक्त भएका ती राजालाई प्रमथ आदि गणहरूले तुरुन्त सम्मानपूर्वक यानमा राखेर उत्तम शिवलोकमा लगे ॥४०–४२॥

मृग र मान्छेको शरीरलाई त्याग गर्ने ती दुबै राजा र मृग दुर्मुख र सुमुख नाम भएका शिवजीका पार्श्ववर्ती बने। माघशुक्ल पञ्चमीका दिन यस लिङ्गको दर्शन गरेको हुँदा मृग र मानिसको शरीर धारण गर्ने ती दुई प्रमथगणका अधिपति बने। यो लिङ्गको दर्शन प्राणीहरूका निमित्त दुर्लभ छ। साक्षात् शिवको रूप भएको यस लिङ्गको दर्शन तथा स्पर्श गर्नाले भुक्ति तथा मुक्ति प्राप्त हुन्छ ॥४३–४५॥

हे विरूपाक्ष ! अब यहाँबाट उत्तर दिशामा छ कोस पर जहाँ असितेश्वर भगवान् रहनुभएको छ, त्यस ठाउँमा जाऊ। त्यस असिततीर्थमा स्नान गरेर तिमीले असितेश्वर लिङ्गको पूजा गर, तिमी धेरै योजन हिँड्न समर्थ हुनेछौ। माघशुक्ल द्वादशीका दिन त्यहाँ सधैँ स्नान गर्नुपर्छ। ठूलो उत्सवका साथ जाग्राम बसेर भगवान् शङ्करको पूजा गर ॥४६–४८॥

बुद्धिमान् हे विरूपाक्ष ! अहिले तिमीलाई कूटेश्वर महादेवको माहात्म्य बताएँ। अब म तिमीलाई असितेश्वर भगवान्को माहात्म्य बताउनेछु ॥४९॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा गालवतीर्थ र कूटेश्वरको माहात्म्यनामक एकसय तेह्रौँ अध्याय पूरा भयो।

---

१६. विरक्तोऽसौ, इति न.सं.पु.पाठः।
१७. समिर्चितः सदैतद्धि सदा कालं प्रसेवयन्, इति न.सं.पु.पाठः।
१८. चातो दिशि समुत्तरे, इति न.सं.पु.पाठः।
१९. जागरेण, इति न.सं.पु.पाठः।

# चतुर्दशाधिकशततमोऽध्यायः

## असिततीर्थासितेश्वरशिवलिङ्गयोर्महिमा

### स्कन्द उवाच

पूर्वजन्मकृतं यत् तत् संस्मार स[1] विरूपदृक्। स्नानाद् गालवतीर्थेऽसौ कूटेश्वरप्रपूजनात् ॥१॥
भूयोऽगमद्विरूपाक्षो मुनिना तेन वै समम्। यत्राऽसितेश्वरं लिङ्गं विराजते घटोद्भव ॥२॥
स्नात्वा चाऽसिततीर्थेऽसौ चाऽसितेशमपूपुजत्। माघशुक्लत्रयोदश्यां जपैः स्तोत्रैः परिक्रमन् ॥३॥
उषित्वा च निशामेकां दत्त्वा दीपं स शूलिने। अपृच्छन्नेमुनिं विप्र ! माहात्म्यं तीर्थलिङ्गयोः ॥४॥

### विरूपाक्ष उवाच

भगवन्मुनिशार्दूल कृपासिन्धो महातपाः। भूयश्च श्रोतुमिच्छामि माहात्म्यं भवतो ध्रुवम् ॥५॥
असितेश इति प्रोक्तं रुद्रस्यास्याभिधानकम्। कस्माच्च भवता धीमन् कथमेतद्वद प्रभो ॥६॥
तीर्थस्यास्य च माहात्म्यं रुद्रस्य च विशेषतः। केन प्रकाशिते ह्येते को मुक्तोऽत्र पुरा विभो ॥७॥

### नेमुनिरुवाच

आसीत्पुराऽसितो नाम मुनिवरो विरूपदृक्। हिमवति तपःस्तप्तुं त्यक्त्वा काशीमिहागतः ॥८॥
शक्रवती नदी पुण्या स्नाता शक्रेण या पुरा। सङ्गमे भानुमत्याश्च सस्नौ प्रेक्ष्याऽसितो मुनिः ॥९॥
तस्मादसिततीर्थञ्च सर्वतीर्थोत्तमोत्तमम्। एतल्लिङ्गं तदा स्नात्वा स्थापितञ्च शिलामयम् ॥१०॥
कार्त्तिकस्यासिताष्टम्यां भक्त्या च विधिवत्पुनः। अत्र जजाप चैकाब्दमेतदभ्यर्च्य सन्ततम् ॥११॥
आविर्भूतस्ततो रुद्रश्चैतल्लिङ्गान्महानिशि। व्याचष्ट वचनं तस्मै वरं दातुं हरो द्विज ॥१२॥

---

## अध्याय - ११४

### असिततीर्थ र असितेश्वर शिवलिङ्गको महिमा

कुमारस्वामीले भन्नुभयो - विरूपाक्षले गालवतीर्थमा स्नान गरेर कूटेश्वर भगवान्को पूजा गरेपछि उनलाई आफूले पूर्वजन्ममा गरेका सम्पूर्ण कुराहरूको संस्मरण भयो। हे अगस्त्य मुनि ! त्यसपछि विरूपाक्ष नेमुनिलाई साथमा लिएर जहाँ असितेश्वर महादेवको लिङ्ग थियो, त्यसै ठाउँमा गए। असिततीर्थमा स्नान गरेर विरूपाक्षले माघशुक्ल त्रयोदशीका दिन जप, स्तोत्रपाठ र परिक्रमा गरेर असितेश्वर भगवान्को पूजा गरे। उनले त्यस रातमा जाग्राम बसेर भगवान् शङ्करको नाममा बत्ती बाले। हे अगस्त्य मुनि ! त्यसपछि उनले त्यस तीर्थ र लिङ्गको माहात्म्य नेमुनिसित सोधे ॥१-४॥

विरूपाक्षले भने - कृपाका समुद्र महातपस्वी हे मुनिश्रेष्ठ ! म फेरि हजुरबाट यस क्षेत्रको माहात्म्य सुन्न चाहन्छु। हे प्रभु ! असितेश्वर भगवान् शङ्करको नाम तपाईंले सुनाउनुभयो। उहाँको उत्पत्ति कसरी भएको हो ? यो तीर्थको माहात्म्य विशेष गरी शिवलिङ्गको माहात्म्य के छ ? कसले यिनीहरूलाई प्रकाशमा ल्यायो र अघि यहाँ दर्शन गरेर को मुक्त भयो ? यी सबै कुरा मलाई बताउनुहोस् ॥५-७॥

नेमुनिले भन्नुभयो - हे विरूपाक्ष ! पहिले असित नाम गरेका कुनै ऋषि थिए। काशी छोडेर उनी हिमालयमा तपस्या गर्न यहाँ आए। यहाँ पहिले इन्द्रले स्नान गरेको शक्रवती नाम गरेकी पवित्र नदी छन्। असितमुनिले त्यहाँ ती नदी र भानुमतीको सङ्गम देखेर स्नान गरे। त्यसैले यो असिततीर्थ सबै तीर्थहरूमा उत्तम छ। उनले यहाँ स्नान गरेपछि शिलाले बनेको यस लिङ्गको स्थापना गरेका थिए। त्यसपछि उनले कार्तिककृष्ण अष्टमीका दिनदेखि एक वर्षसम्म भक्तिपूर्वक विधिअनुसार यस लिङ्गको निरन्तर पूजा गरेर जप गरे। एक वर्षपछि भगवान् शङ्कर तिनलाई वर दिनका लागि मध्यरातमा यसै लिङ्गबाट प्रकट हुनुभयो र उनलाई भन्नुभयो ॥८-१२॥

---

१. यत्तत्संस्मृतवान्, इति न.सं.पु.पाठः।

असितेश्वर उवाच

अत्रैव हिमवत्सानौ मामास्थाप्य तपः कृतम्। हिमाद्रौ यत्कृतो धर्मस्तत्तुल्यमत्र यत्कृतम् ॥१३॥
शृणु दास्ये वरं तुभ्यमेतद् भवतु सन्ततम्। लोकचतुर्गुणं जीव्याद् गमनं बहुयोजनम् ॥१४॥

नेमुनिरुवाच

इत्याकर्ण्य वचो विप्र ! चाऽसितो मुनिसत्तमः। प्रययौ स वरं लब्ध्वा स्वाश्रमं मध्यदेशकम् ॥१५॥
तदादि ह्यभवच्चाऽसौ गरीयान् मुनिमण्डले[२]। नित्यं स्नात्वा समुद्रे वै गच्छति स्म स्वमन्दिरम् ॥१६॥
भूयः शृणु प्रवक्ष्यामि मुक्तः कश्चिज्जनः पुरा। एतल्लिङ्गप्रसादात् सोऽधुनाऽभूत् पशुपानुगः[३] ॥१७॥
तन्मातुः पतितः कुक्षौ विन्दुस्तस्य पितुर्यदा। कुक्कुटास्यं गृहे प्राक्च दृष्टं तया तदोषसि ॥१८॥
तस्मात्कुक्कुटवक्त्रोऽभूत्स शूद्रो लोकनिन्दितः। विडम्बितो जनैर्नित्यं दुःखार्तो निर्गतो गृहात् ॥१९॥
भ्रामं भ्रामं[४] मुहुश्चासौ देशाद्देशान्तरं तदा। स्वात्मानमवप्रेक्ष्याऽऽर्य चाऽत्रैव प्राप्तवान् पुनः ॥२०॥
ददर्श शूद्रनामानं ध्यानस्थं मुनिसत्तमम्। एतत्तीर्थजले स्नात्वा[५] सम्पूज्यैनञ्च भक्तितः ॥२१॥
उपगम्य मुनेः स्थानं ननाम शिरसा स तम्। स्वात्मनस्तारणं हेतुमपृच्छद् गद्‌गदोदितैः ॥२२॥

कुक्कुटास्य उवाच

नमस्ते भगवन् धीर कथमहमिह प्रभो। तारयामीममात्मानं लोकनिन्द्यञ्च सर्वतः ॥२३॥
एतद्वक्त्रं समालोक्य लोका हसन्ति[६] नित्यशः। तस्मात्क्षणमपि स्थातुं नोत्सहे स्वगृहेऽपि च ॥२४॥
तस्माद्विनिर्गतो गेहाद्दैवेन प्रेरितो ह्यहम्। अत्रैव प्राप्तवान् मह्यमुपदेशः[७] प्रदीयताम् ॥२५॥

---

असितेश्वरले भन्नुभयो – यस हिमालय पर्वतको शिखरमा पुण्य गरेर जुन फल पाइन्छ यहाँ पुण्य गर्नाले पनि त्यही फल पाइन्छ। मेरो स्थापना गरेर तिमीले यहाँ जुन तपस्या गर्‍यौ त्यसै समानको पुण्यफल अन्यत्र प्राप्त हुँदैन। त्यसैले म तिमीलाई सामान्य प्राणीभन्दा चारगुणा बढी बाँच्ने र धेरै योजन हिंड्न सक्ने वरदान दिन्छु ॥१३ –१४॥

नेमुनिले भन्नुभयो – हे विरूपाक्ष ! भगवान्‌बाट यस्तो वर प्राप्त गरी मुनिश्रेष्ठ असित आफ्नो आश्रम रहेको मध्यदेशतिर लागे। त्यसै दिनदेखि यो ठाउँ ऋषिहरूका निमित्त सधैँ गौरवशाली बन्न पुग्यो। असित पनि समुद्रमा स्नान गरेर आफ्नो आश्रमतिर गए। फेरि म बताउँछु, सुन – अघि यस लिङ्गको आराधना गरेर भगवान्‌को अनुग्रहबाट कुनै मानिस मुक्त भएको थियो। त्यो आज पनि शिवजीको अनुचर भएर रहेको छ। जब त्यो व्यक्ति जन्मनुपूर्व उसका बाबुको वीर्य आमाको गर्भमा पर्‍यो उसका बाबुले त्यसभन्दा पहिले बिहानीपख घरमा कुखुराको अनुहार देखे। त्यसैले उसको मुख कुखुराको जस्तो भयो। यसैले दुनियाँले उसलाई निन्दा गरे। अरूले सधैँ उपहास गरेको हुँदा ज्यादै दुःखी हुँदै ऊ घरबाट हिंड्यो ॥१५–१९॥

आफ्नो अनुहार हेरेर दिक्क मान्दै ऊ एक देशबाट अर्को देश घुम्दै फेरि यसै ठाउँमा आइपुग्यो। उसले यस ठाउँमा शूद्र नाम गरेका ऋषिलाई देख्यो। ती ऋषि यसै तीर्थमा स्नान गरेर भक्तिपूर्वक शिवजीको पूजा गरी ध्यानमा तत्पर भएका थिए। उसले मुनि बसेको ठाउँमा गई मुनिलाई शिर झुकाएर नमस्कार गरेर गद्‌गद हुँदै दुःखबाट छुट्कारा पाउने कारणका बारेमा ऋषिसँग सोध्यो ॥२०–२२॥

कुक्कुटस्यले भन्यो – हे भगवन् ! हजुरलाई नमस्कार छ। चारैतिरबाट दुनियाँले निन्दा गरेको यो मेरो आत्मालाई म कसरी पार लगाऊँ ? दुनियाँ यो मेरो मुख देखेर सधैँ उपहास गर्दछन्। त्यसैले म आफ्नो घरमा समेत एक क्षण पनि बस्न चाहन्नँ। त्यसैको दैवसंयोग अनुसार म घरबाट निस्किएर यहाँ आइपुगेको छु। हजुर मलाई उपदेश दिनुहोस् ॥२३–२५॥

---

२. मुनीनां हि गरीयसः, इति न.सं.पु.पाठः।
३. स चाद्याप्यभूच्छिवानुगः, इति न.सं.पु.पाठः।
४. भ्राम्यमानः, इति न.सं.पु.पाठः।
५. एतत्तीर्थजलाप्लाव्य, इति न.सं.पु.पाठः।
६. हास्यन्ति, इति न.सं.पु.पाठः।
७. प्राप्तवांस्तन्म उपदेशः, इति न.सं.पु.पाठः।

शूद्र उवाच

एतत्तीर्थजले स्नात्वा[८] चाऽसितेशं प्रपूजय। मन्त्रं पञ्चाक्षरं भक्त्या त्वं घोषय निरन्तरम्[९] ॥२६॥
ततः प्राप्स्यसि चैतस्माद् वाञ्छितं फलमुत्तमम्[१०]। अवश्यमेव कर्त्तव्यं वैराग्याद्[११] हरपूजनम् ॥२७॥

नेमुनिरुवाच

इत्याकर्ण्य मुनेर्वाचं सस्नौ तीर्थे स भक्तितः। माघशुक्लनवम्याञ्च तत्र लिङ्गमपूपुजत् ॥२८॥
वन्याशनैः स तृप्तात्मा हरपूजनतत्परः। एवं निनाय चैकाब्दं जलाप्लावार्चनैर्द्विज ॥२९॥
ततः संवत्सरान्ते च सम्प्राप्य[१२] प्रमथास्तथा। अभिषेकं ददुस्तस्मै मृते च प्रमथा भृशम् ॥३०॥
निन्युः शिवपुरं तं ते पुष्पकेण शिवाज्ञया। अवर्षन् कुसुमासारं गीतवाद्यनिनादितैः ॥३१॥
अभूत्कुक्कुटवक्त्रोऽसौ गरीयान्प्रमथेश्वरः। रुद्रस्यानुचरो नित्यं सर्वलोकैः प्रवन्दितः ॥३२॥
भूयो गच्छ विरूपाक्ष ! यत्रास्ते भैरवेश्वरः। सार्द्धैकयोजने दूरे उत्तरस्यामितो दिशि[१३] ॥३३॥
शक्रवत्याश्च गण्डक्याः श्रद्धया स्नाहि सङ्गमे। शक्रतुल्यबलोपेतो भविष्यसि विरूपदृक् ॥३४॥
घर्घरा च नदीपुण्या देवदार्वद्रिसम्भवा। गण्डकी च तयोर्योगे स्नानाद्दशगवां फलम् ॥३५॥
शिप्रा सा च नदी श्रेष्ठा शैत्या हिमस्रवोद्भवा। गण्डक्याः सङ्गमे तीर्थं भैरवाख्यञ्च विश्रुतम् ॥३६॥
स्नात्वा तत्र शिवं साक्षाल्लिङ्गं जलमयं परम्। अर्चय भैरवाख्यं त्वं ततः प्राप्स्यसि वाञ्छितम् ॥३७॥

---

शूद्रले भने - तिमी यस तीर्थको जलमा स्नान गरेर असितेश्वर भगवान्को पूजा गर अनि रातिदन मन्त्रोच्चारणपूर्वक पञ्चाक्षर मन्त्र जप। त्यसपछि यसै लिङ्गबाट तिमीले इच्छा लागेको उत्तम फल पाउनेछौ। शिवजीको पूजा गर्दा अवश्य विरक्त हुनुपर्दछ ॥२६ -२७॥

नेमुनिले भन्नुभयो - मुनिको यस्तो कुरा सुनेर त्यसले भक्तिपूर्वक तीर्थमा स्नान गरे र माघशुक्ल नवमीका दिन असितेश्वर शिवलिङ्गको पूजा गर्‍यो। हे विरूपाक्ष ! वनमा पाइने खानेकुराहरू खाएर आत्मालाई तृप्त बनाई उसले सधैं भगवान् शङ्करको पूजा गर्‍यो। यसरी जलमा स्नान गरी पूजा गरेर उसले एक वर्ष बितायो। एक वर्षको अन्त्यमा प्रमथगणहरू त्यहाँ आए र मरेको कुक्कुटयस्यलाई अभिषेक गरे ॥२८-३०॥

उनीहरूले शिवजीको आज्ञाबमोजिम गीत गाउँदै, बाजा बजाउँदै, पुष्पवृष्टि गर्दै पुष्पक विमानमा राखेर त्यसलाई शिवलोकमा लगे। त्यो कुखुराको मुख भएको व्यक्ति प्रमथगणमा अग्रगण्य हुन पुग्यो। सबै प्राणीहरूद्वारा वन्दनीय बनेर त्यो शिवजीको सेवक भएर बस्यो ॥३१-३२॥

हे विरूपाक्ष ! फेरि तिमी यहाँबाट छ कोस टाढा उत्तर दिशामा जहाँ भैरवेश्वर महादेव रहनुभएको छ, त्यस ठाउँमा जाऊ। हे विरूपाक्ष ! तिमीले त्यहाँ गएर शक्रवती र गण्डकी नदीको सङ्गममा स्नान गर्‍यौ भने तिमी इन्द्रजत्तिकै शक्तिशाली हुनेछौ। त्यहाँ देवदारु पर्वतबाट घर्घरा नाम गरेकी पवित्र नदी उत्पन्न भएकी छन्। घर्घरा र गण्डकी नदीको सङ्गममा स्नान गर्‍यो भने दशवटा गाई दान गरेको फल प्राप्त हुन्छ। त्यहाँ हिउँ पग्लिएर उत्पन्न भएकी शिप्रा नाम गरेकी उत्तम नदी छिन्। शिप्रा र गण्डकी नदीको दोभानमा भैरवनामक प्रसिद्ध तीर्थ छ। त्यहाँ स्नान गरेर जलमय भैरवनामक शिवको उत्तम लिङ्गलाई पूजा गर। त्यसपछि तिमीले आफूले सोचे अनुसारको फल पाउनेछौ ॥३३-३७॥

---

८. एतत्तीर्थजलप्लाव्य, इति न.सं.पु.पाठः।
९. पञ्चाक्षरं समुच्चार्य तद्घोषय ह्यहर्निशम्, इति न.सं.पु.पाठः।
१०. चैतस्मात्त्वं वाञ्छितफलोत्तमम्, इति न.सं.पु.पाठः।
११. विरक्तः, इति न.सं.पु.पाठः।
१२. अत्रैत्य, इति न.सं.पु.पाठः।
१३. चातो हि दिशि चोत्तरे, इति न.सं.पु.पाठः।

पृष्टञ्च यन्मे भवता महत्त्वं भो भक्त ! यस्मादसितेश्वरस्य।
प्रोक्तं ध्रुवं तन्निखिलं मया तद्वक्ष्यामि यत्तच्छृणु भैरवस्य ॥३८॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये
विरूपाक्षतीर्थयात्रायामसिततीर्थासितेश्वरयोर्माहात्म्यं नाम चतुर्दशाधिकशततमोऽध्यायः ॥११४॥

---

हे भक्त ! तिमीले मलाई असितेश्वर भगवान्‌को जुन माहात्म्य सोधेका थियौ, त्यो सबै मैले बताएँ। अब म भैरवलिङ्गको माहात्म्य बताउँछु ॥३८॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा असिततीर्थ र असितेश्वरको माहात्म्यनामक
एकसय चौधौं अध्याय पूरा भयो।

# पञ्चदशाधिकशततमोऽध्यायः

## भैरवतीर्थभैरवेश्वरशिवलिङ्गयोर्महिमा

### स्कन्द उवाच

स्नानादसिततीर्थेऽसौ तल्लिङ्गस्याऽर्चनात्पुनः । जहौ परिश्रमं सर्वं सर्वत्र गमनक्षमः ॥१॥
गण्डक्याः सङ्गमे स्नात्वा विरूपाक्षोऽगमत्पुनः । गण्डक्याश्च तटेऽगस्त्य ! यत्राऽऽस्ते भैरवेश्वरः ॥२॥
भैरवाख्ये महातीर्थे स्नात्वाऽभ्यर्च्य शिवं परम् । अम्भोमयं महालिङ्गं तन्नद्योः सङ्गमे मुदा ॥३॥
तपःशुक्लचतुर्दश्यां लिङ्गमभ्यर्च्य भक्तितः । जागृतवानसौ तत्र पप्रच्छ तत्प्रशंसनम् ॥४॥

### विरूपाक्ष उवाच

श्रोतुकामः पुनश्चाऽहं त्वत्तो ब्रह्मविदांवर[1] । एतत्तीर्थस्य माहात्म्यं जलमूर्तेः शिवस्य च ॥५॥
केन प्रकाशितं लिङ्गं तीर्थे लब्धञ्च किं फलम् । स्नानात्तदर्चनाच्चाऽत्र को मुक्तो वद मे प्रभो ॥६॥

### नेमुनिरुवाच

अभूत्संवर्त्तको विप्र ! कालाग्निरुद्रशङ्करः[2] । पूर्वं भैरवरूपेण जघास सर्वजङ्गमान् ॥७॥
निःसत्त्वां मेदिनीं कृत्वा शून्याञ्च सर्वजन्तुभिः । स्वयं हिमालये स्थातुमत्रैव प्राप्तवान् विभुः ॥८॥
ददर्श भैरवोऽसौ हि चैतत्तीर्थं शिवात्मकम् । पुण्यात्पुण्यतमं ज्ञात्वा चाऽवात्सीदत्र जीवने ॥९॥
दिवसहस्रवर्षान्ते कृपयाऽत्राऽगमद् विधिः[3] । अयाचत वरं स्तुत्वा भक्त्यैतज्जलसंप्लवः ॥१०॥
एतस्माद्धि वरं लब्ध्वा लोकान् ससर्ज पद्मजः । एतस्यां विप्र ! मेदिन्याञ्चतुर्विधांश्च सर्वशः ॥११॥
त्रिंशद्वर्षसहस्रान्ते कश्चिन्मुक्तः शृणु द्विज । एतत्तीर्थप्रसादाद्वै भैरवस्य विशेषतः ॥१२॥

---

## अध्याय - ११५

### भैरवतीर्थ भैरवेश्वर शिवलिङ्गको महिमा

कुमार स्वामीले भन्नुभयो – विरूपाक्षले असिततीर्थमा स्नान गरेर त्यस लिङ्गको पूजा गरेको हुँदा उनको सबै परिश्रम हटेर गयो र उनी सबैतिर हिँड्न समर्थ भए। त्यसपछि विरूपाक्ष गण्डकीको सङ्गममा स्नान गरेर गण्डकीकै तटमा रहेको भैरवेश्वर महादेव भएको क्षेत्रमा गए। विरूपाक्षले ती दुई नदीको सङ्गममा रहेको भैरवनामक महातीर्थमा प्रसन्न हुँदै स्नान गरेर जलमय त्यस महालिङ्गको पूजा गरे। माघशुक्ल चतुर्दशीका दिन भक्तिपूर्वक लिङ्गको पूजा गरेर उनी त्यहाँ जाग्राम बसे र नेमुनिसित त्यस तीर्थ र लिङ्गको माहात्म्य सोधे ॥१-४॥

विरूपाक्षले भने – हे ब्रह्मज्ञ ! अब म हजुरबाट जलमय मूर्ति भएका शिवलिङ्गको र यस तीर्थको माहात्म्य सुन्न चाहन्छु। हे प्रभु ! यस लिङ्गलाई कसले प्रकाशमा ल्याएको थियो ? यस तीर्थमा स्नान गरेर कसले के फल पायो ? यस लिङ्गको पूजा गरेर को मुक्त भयो ? सबै मलाई बताउनुहोस् ॥५-६॥

नेमुनिले भन्नुभयो – हे विरूपाक्ष ! अघि प्रलयकालीन अग्निजस्तै देखिने संवर्त्तक नाम गरेका रुद्र भगवान्ले भैरवको रूप लिएर सम्पूर्ण प्राणीहरूको संहार गर्नुभएको थियो। भगवान् शङ्करले पृथ्वीलाई सम्पूर्ण प्राणीहरूले रहित तुल्याएर हिमालयमा बस्नका लागि आफैँ यहाँ आउनुभयो। भैरव पनि यस तीर्थलाई अत्यन्त पुण्यदायक र शिवस्वरूप ठानेर यसै जलमा बस्नुभयो ॥७-९॥

दिव्य हजार वर्ष पुगेपछि त्यहाँ ब्रह्माजी आउनुभयो र भक्तिपूर्वक जलमा स्नान गरेर उहाँले भैरवको स्तुति गर्दै वर माग्नुभयो। हे विरूपाक्ष ! यिनै भैरवबाट वर प्राप्त गरेर ब्रह्माजीले यो पृथ्वीमा सबैतिर चार किसिमका प्राणीहरूको सृष्टि गर्नुभयो। हे विरूपाक्ष ! त्यसको तीस हजार वर्षपछि यो तीर्थ र विशेष गरी भैरवरूपधारी भगवान् शङ्करको अनुग्रहबाट कुनै व्यक्ति मुक्त भएको थियो ॥१०-१२॥

---

१. त्वयि ब्रह्मविदां वरे, इति न.सं.पु.पाठः ।
२. कालाग्निरुद्रदेवता, इति न.सं.पु.पाठः ।
३. सहस्राणां समान्तेऽत्र दिव्यानामगमद्विधिः, इति न.सं.पु.पाठः ।

पुरासीत्कश्चिदेकाक्षो वैश्यो नाम्ना विरूपदृक्। पूर्वजन्मविपाकेन हीनोऽसावेकचक्षुषा ॥१३॥
अन्यजनेन यद्दत्तो दीपो देवाय वै पुरा। गृहीतस्तेन तद्दीपः क्रीडनाय च लीलया ॥१४॥
तत्पापेन ह्यसौ वैश्यस्तदर्द्धहरणेन च। एकेन चक्षुषा हीनश्चाभूज्जन्मान्तरे द्विज ॥१५॥
एकाक्षो लोकनिन्द्योऽसावभूद् दुःखातुरो हि विट्। एकदा दिवसे धीरं पप्रच्छ कारणं स्वकम् ॥१६॥
व्याचष्ट धर्मशर्मा च तस्मै दुःखातुराय वै। हेतुशास्त्रं समालोक्य वचो मधुसमार्द्रकम् ॥१७॥

धर्मशर्मोवाच

अवश्यमेव भोक्तव्यं कृतं यत्तत्[४] पुराऽधुना। इहैव सुकृतं वापि दुष्कृतं वा तथा पुनः ॥१८॥
भवतार्द्धो हृतो दीपः परदत्तो सुराय च[५]। पूर्वजन्मनि तस्माद्धि चैकेक्षणो भवानभूत् ॥१९॥
कुरु तीर्थाटनं वैश्य हिमवद्गह्वरेऽधुना। नेपालाख्ये महाक्षेत्रे बहुतीर्थविराजिते ॥२०॥
क्रमात्तदुत्तरे तीर्थे भैरवाख्ये ततो हि विट्। स्नायतां भवता तत्र सन्ध्यादीपः प्रदीयताम् ॥२१॥
स्नानदीपप्रदानाच्च ते दास्यति वरं शिवः। गोचरो दिव्यनेत्रेण सन्मूर्तिरम्भसामयम्[६] ॥२२॥

नेमुनिरुवाच

इत्युपदेशमाकर्ण्य वैश्योऽसौ धीयुतस्तदा। विनिर्ययौ गृहात्स्नातुं कश्चिदासीत् सहायकः[७] ॥२३॥
परिभ्रम्य च तीर्थाणि चाऽत्रैव प्राप्तवान् शनैः। सस्नौ वैश्यो मुदा भक्त्या संस्मरन्[८] तद्वचः पुनः ॥२४॥
अपूपुजत्तदा रुद्रं वैश्योऽसौ जलमूर्त्तिकम्। पञ्चोपचारकैर्भक्त्या शनैः पठँश्च तन्मनुम् ॥२५॥
सायं काले ततो गत्वा चात्र दीपं ददौ पुनः। शिखोज्ज्वलं घृतैः पूर्णं शिवमुद्दिश्य विड्वरः ॥२६॥

---

हे विरूपाक्ष ! अघि कुनै एकाक्ष नामक वैश्य पूर्वजन्मको कर्मको फलले गर्दा एउटा आँखो नभएको कानो भएको थियो। पहिले कुनै समयमा त्यसले अरू मानिसले देवतालाई चढाएको बत्ती क्रीडाका लागि लीलापूर्वक ग्रहण गऱ्यो। आधा बत्ती चोरेको पापले गर्दा त्यो वैश्य अर्को जन्ममा एउटा आँखाबाट वञ्चित भयो। एउटा मात्र आँखा भएको त्यस वैश्यलाई दुनियाँले निन्दा गरेकाले त्यो अत्यन्त दुःखित थियो। एकदिन धर्मशर्मा नामक विद्वान्लाई उसले आफ्नो एउटा मात्र आँखो हुनुको कारण सोध्यो। धर्मशर्माले दुःखबाट आत्तिएको त्यस व्यक्तिलाई कर्मविपाक शास्त्रको अध्ययन गरेर मीठो बोलीमा भन्नलागे ॥१३-१७॥

धर्मशर्माले भने – अघि धर्म होस् वा पाप, जे गरेको छ, त्यो यसै जन्ममा अवश्य भोग गर्नुपर्छ। तिमीले अरूले देवतालाई चढाएको बत्तीको आधा भाग चोरेका थियौ, त्यसैले तिमी एउटा आँखा नभएको कानो भयौ। हे वैश्य ! हिमालयको खोँचमा रहेको नेपाल नाम गरेको पुण्यभूमि छ। धेरै तीर्थ भएको त्यस स्थलमा गएर तिमीले तीर्थदर्शन गर। हे वैश्य ! क्रमैले त्यसभन्दा उत्तरपट्टि रहेको भैरवनामक तीर्थमा तिमीले स्नान गर र साँझमा बत्ती बाल। स्नान गरेर दियो बालेपछि जलमूर्ति भगवान् शङ्करले तिमीलाई दिव्य नेत्रले हेरेर वर दिनुहुनेछ ॥१८-२२॥

नेमुनिले भन्नुभयो – बुद्धिमान् त्यो वैश्य यस्तो सुन्नासाथ कसैलाई साथमा लिएर स्नान गर्न घरबाट तुरुन्त निस्कियो। बिस्तारै तीर्थहरू घुम्दै त्यो वैश्य यसै ठाउँमा आइपुग्यो। अघिको कुरा सम्झिएर त्यसले फेरि भक्तिपूर्वक प्रसन्न हुँदै यस तीर्थमा स्नान गऱ्यो। मनमनै शिवजीको मन्त्र जप्दै सभक्ति पञ्चोपचार विधिबाट त्यस वैश्यले जलमय मूर्ति भएका भगवान् शङ्करको पूजा गऱ्यो। त्यस वैश्यले साँझ त्यस ठाउँमा गएर भगवान् शिवजीलाई लक्ष्य गरेर घिउले भिजाएको ज्वालाले उज्यालो बत्ती बाल्यो ॥२३-२६॥

---

४. यत्तत्कृतम्, इति न.सं.पु.पाठः।
५. भवतार्द्धं हृतं दीपमन्यद्दत्तं सुरस्य च, इति न.सं.पु.पाठः।
६. कमपि चावलम्बकः, इति न.सं.पु.पाठः।
७. संस्मृत्या, इति न.सं.पु.पाठः।
८. मर्त्यानामम्भसामयक, इति न.सं.पु.पाठः।

एवं दीपं[९] शिवायाऽहं ददे स्वात्मविभूतये। ततस्तत्पदमिश्रस्य जलस्याऽऽप्स्यामि सेवनम्[१०] ॥२७॥
एवं सङ्कल्प्य वैश्योऽसौ हराय जलमूर्त्तये। घृतपूर्णं प्रदीपञ्च ददावीशाय ताम्रगम्[११] ॥२८॥
जानुमात्रे जले स्थित्वा[१२] वैश्योत्तमः शनैः शनैः। शिवमन्त्रं धियोच्चार्य्य चाऽजहात्तत्प्रदीपकम् ॥२९॥
अधावच्च तमुद्दिश्य ग्राहोऽत्रस्थो हि सन्ततम्। तत्पादौ स तु सङ्गृह्य निनाय तज्जलान्तरम् ॥३०॥
आययू रुद्रदूतास्ते कुर्वन्तः पुष्पवर्षणम्[१३]। दिवि दुन्दुभयो नेदुर्ग्राहग्रस्ते विशांवरे ॥३१॥
आस्थाय पुष्पके याने वाद्यगीतैः प्रसेव्य च। निन्युः शिवपुरं तं ते लोकदर्शनपूर्वकम्[१४] ॥३२॥
अभूत्[१५] स एव चैकाक्षो महादेवस्य पार्श्वगः। प्रमथानां गरिष्ठश्च भैरवेशप्रसादतः ॥३३॥
अत्र संस्नाति यो[१६] वत्स ! चैत्रस्य पूर्णिमादिने। सर्वारिष्टैर्विनिर्मुक्तः प्रयाति भैरवालयम् ॥३४॥
अतो गच्छ विरूपाक्ष ! पूर्वदिशे पुनस्तथा। योजनार्धविदूरे त्वमेकभृङ्गाद्रिशेखरे ॥३५॥
ब्रह्मतीर्थे च यत्राऽऽस्ते ब्रह्मेश्वरो महाविभुः। येन दत्तो वरो पूर्वं बाणासुराय सेविने[१७] ॥३६॥
ब्रह्मतीर्थे मुदा स्नात्वा ब्रह्मेश्वरं समर्हय। सर्वैनोभिर्विनिर्मुक्तो ब्रह्मत्वं किल प्राप्स्यसि[१८] ॥३७॥

एतद्धि तुभ्यं कथितं मया वै माहात्म्यमेतस्य च भैरवस्य।
अन्यस्य लिङ्गस्य पुनर्महत्त्वं तत्रैत्य धीमन्निखिलञ्च वच्मि ॥३८॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां भैरवेश्वरभैरवतीर्थमाहात्म्यं नाम पञ्चदशाधिकशततमोऽध्यायः ॥११५॥

---

आत्मकल्याणका निमित्त म यो बत्ती भगवान् शङ्करलाई समर्पण गर्दछु, उहाँको पाउको आश्रय लिएर सेवा गर्न पाऊँ। यस्तो सङ्कल्प गरेर तामाको दीपकमा घिउ राखेर बत्ती बाल्यो र जलमूर्ति भगवान् शङ्करलाई समर्पण गऱ्यो। घुँडा घुँडासम्म पानीमा प्रवेश गरेर मनमनै शिवजीको मन्त्र उच्चारण गर्दै उसले त्यहाँ बत्ती अर्पण गऱ्यो ॥२७-२९॥

त्यसपछि त्यहाँ रहेको गोही दौडिएर त्यो वैश्यतिर गयो। उसले त्यसको एउटा गोडा समात्यो र उसलाई पानीभित्र लग्यो। वैश्यलाई गोहीले समातेपछि शिवजीका दूतहरू फूल वर्षा गर्दै त्यस ठाउँमा आइपुगे। आकाशमा नगराहरू बजे। त्यसपछि उनीहरूले बाजा बजाएर गीत गाउँदै उसको सेवा गरी उसलाई पुष्पक विमानमा राखेर सम्पूर्ण मानिसहरूलाई देखाउँदै शिवलोकतिर लगे ॥३०-३२॥

त्यो एक आँखे वैश्य भगवान् शङ्करको भैरव अवतारको कृपाले गर्दा प्रमथगणहरूमा मुख्य भएर शिवजीको नजिकै बस्न पुग्यो। हे बाबु ! चैत्रपूर्णिमाको दिन जसले यस तीर्थमा स्नान गर्छ त्यो व्यक्ति सम्पूर्ण दुःखबाट मुक्त भएर भैरवको लोकमा जान्छ। हे विरूपाक्ष ! अब तिमी यहाँबाट पूर्वतिर दुई कोस टाढा रहेको एकशृङ्ग नाम गरेको पर्वतशिखरमा जाऊ। भक्त बाणासुरलाई वर दिने महाप्रभु ब्रह्मेश्वर ब्रह्मतीर्थका साथ यहाँ बस्नुभएको छ। तिमी ब्रह्मतीर्थमा प्रसन्न भएर स्नान गर, त्यसपछि ब्रह्मेश्वर भगवान्को पूजा गर। त्यसपछि सम्पूर्ण पापबाट मुक्त भएर तिमीले ब्रह्मत्व पाउनेछौ ॥३३-३७॥

हे बुद्धिमान् विरूपाक्ष ! मैले तिमीलाई भैरवलिङ्ग र भैरवतीर्थको माहात्म्य सुनाएँ र यसैगरी सम्पूर्ण तीर्थहरूको माहात्म्य तत् तत् स्थानमा गएर बताउनेछु ॥३८॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डको नेपालमाहात्म्यमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा भैरवेश्वर र भैरवतीर्थको महिमानामक एकसय पन्ध्रौं अध्याय पूरा भयो।

---

९. एष दीपो, इति न.सं.पु.पाठः।
१०. लभिष्यामि च सेवनम्, इति न.सं.पु.पाठः।
११. ददौ ताम्रस्थमीशिने, इति न.सं.पु.पाठः।
१२. विश्य, इति न.सं.पु.पाठः।
१३. पुष्पासारं प्रवर्षयन्, इति न.सं.पु.पाठः।
१४. सर्वलोकान् प्रदर्शयन्, इति न.सं.पु.पाठः।
१५. भवेत्, इति न.सं.पु.पाठः।
१६. यः स्नायते, इति न.सं.पु.पाठः।
१७. भक्तिने, इति न.सं.पु.पाठः।
१८. प्रलभिष्यसि, इति न.सं.पु.पाठः।

# षोडशाधिकशततमोऽध्यायः

ब्रह्मेश्वरशिवलिङ्गमहिमा

स्कन्द उवाच

स्नानाद् भैरवतीर्थेऽसावभूद्दिव्येक्षणो महान्। लक्षयोजनदूरस्थं दृश्यं द्रष्टुं क्षमोऽभवत्[1] ॥१॥
अगमन्मुनिना सार्धं भूयोऽगस्त्य ! विरूपदृक्। ब्रह्मेश्वरो हि यत्राऽऽस्ते ततः पूर्वदिशि ध्रुवम् ॥२॥
ब्रह्मतीर्थे तत सस्नौ विरूपाक्षो यथाविधि। एकशृङ्गाचलं भूयः समारोहच्छनैः शनैः ॥३॥
अर्चीति स्म स तल्लिङ्गं भक्त्या नानोपहारकैः। द्वन्द्वभावं परित्यज्य शिवमेवाऽवलम्बितः ॥४॥
फाल्गुनपूर्णिमायाञ्च तन्निशायां विरूपदृक्। जागर्ति स्म शिवात्माऽसौ भक्त्योपोष्य प्रपूजनैः ॥५॥
पप्रच्छ नेमुनिं नक्तं तन्माहात्म्यं प्रणम्य च। लिङ्गतीर्थसमुत्पत्तिं[2] विनयेन घटोद्भव ॥६॥

विरूपाक्ष उवाच

भूयश्च भवतो धीर ![3] श्रोतुकामोऽस्मि सर्ववित्। एतल्लिङ्गस्य माहात्म्यं तीर्थस्य च विशेषतः ॥७॥
समुद्भूतं कथं लिङ्गमेतन्मे हि वद प्रभो। तीर्थे वाऽत्र च को मुक्तः पूर्वं ब्रह्मविदांवर ॥८॥

नेमुनिरुवाच

निःशेषे च पुरा भूमौ ब्रह्मैकमद्वयं तदा। षष्टिवर्षसहस्रे द्वे गते चाऽत्र[4] समागतः ॥९॥
आराधितुं महादेवं जगतां कारणाद्विधिः। अत्र स्नातुं स्वयं पूर्वं तीर्थमकल्पयद् द्विज ॥१०॥
ब्रह्मा संस्मार वै गङ्गामाप्लवाय विरूपदृक्। ततो नदी समुद्भूता मृगेन्द्रोत्तमशेखरात् ॥११॥

---

## अध्याय – ११६

ब्रह्मेश्वर शिवलिङ्गको महिमा

कार्तिक स्वामीले भन्नुभयो – भैरवतीर्थमा स्नान गरेको हुँदा विरूपाक्षलाई दिव्यदृष्टि प्राप्त भयो। उनी चार लाख कोस पर रहेको वस्तु पनि चिन्न सक्ने भए। हे अगस्त्य मुनि ! त्यसपछि नेमुनिलाई साथमा लिएर विरूपाक्ष पूर्वदिशामा ब्रह्मेश्वर रहनुभएको क्षेत्रमा गए। विरूपाक्षले विधिपूर्वक ब्रह्मतीर्थमा स्नान गरे। त्यसपछि उनी बिस्तारै एकशृङ्ग नाम गरेको पहाडमा चढे। शिवमा नै आश्रित बनेर अभेदबुद्धि लिई उनले विभिन्न पूजासामग्रीद्वारा भक्तिपूर्वक त्यस लिङ्गको पूजा गरे। फाल्गुनशुक्ल पूर्णिमाको दिन राति विरूपाक्ष शिवकै रूप बनेर भक्तिपूर्वक उहाँको पूजा गर्दै जाग्राम बसे। हे अगस्त्य मुनि ! रात परेपछि नम्र हुँदै विरूपाक्षले प्रणाम गरेर नेमुनिसँग लिङ्ग र तीर्थको माहात्म्य सोधे ॥१–६॥

विरूपाक्षले भने – सर्ववेत्ता हे मुनिश्रेष्ठ ! मलाई यस लिङ्ग र तीर्थको माहात्म्य सुन्न मन लागेको छ। ब्रह्म जान्नेहरूमा श्रेष्ठ भएका हे प्रभु ! यस शिवलिङ्गको उत्पत्ति कसरी भयो ? यस तीर्थमा अघि को मुक्त भयो ? मलाई बताउनुहोस् ॥७–८॥

नेमुनिले भन्नुभयो – अघि महाप्रलयको बेलामा ब्रह्म मात्र हुनुहुन्थ्यो। दुई साठी हजार वर्ष अर्थात् अर्थात् एक लाख बीस हजार वर्ष बितेपछि त्यहाँ ब्रह्माजी आउनुभयो। हे विरूपाक्ष ! अघि ब्रह्माले संसारको सुष्टि गर्नका लागि भगवान् शङ्करको आराधना गर्न स्नानका लागि आफैँ तीर्थ बनाउनुभयो। हे विरूपाक्ष ! ब्रह्माले स्नान गर्नका लागि गङ्गाजीलाई सम्झनुभयो। त्यसपछि मृगेन्द्र पर्वतको उत्तम शिखरबाट नदी उत्पत्ति भइन् ॥९–११॥

---

१. ....दूरस्थमयमिति सुनिर्णितः, इति न.सं.पु.पाठः।
२. लिङ्गोद्भूतञ्च तीर्थस्य, इति न.सं.पु.पाठः।
३. भूयो भवति धीरोऽहम्, इति न.सं.पु.पाठः।
४. तदतीतेऽत्र, इति न.सं.पु.पाठः।

उवाह सा[५] नदी पुण्या स्वच्छकल्लोलमालिनी। पूर्वं ब्रह्माङ्घ्रिजायाश्च ब्रह्मपद्याः समागमात् ॥१२॥
तत्रैव ब्रह्मणा स्नातमेतयोः सङ्गमे मुदा। ब्रह्मतीर्थमिदं तस्मात् सर्वतीर्थोत्तमं स्मृतम्[६] ॥१३॥
तत्र स्नात्वा विधिर्वत्स चैनं पर्वतमारुहत्। सुखासीनो मुदा भक्त्या रुद्रमन्त्रं जजाप वै ॥१४॥
कार्त्तिकस्यासिताष्टम्यामेतल्लिङ्गं प्रकल्पितम्। दिव्यवर्षसहस्रान्ते तत्पूजिते महानिशि ॥१५॥
ततोऽस्मात्स वरं लब्ध्वा लोकान्ससर्ज चेह वै। चतुर्विधाँश्च मेदिन्यां यथापूर्वमभूदसौ ॥१६॥
कालान्ते च ततोऽतीते मुक्तः कश्चिद् द्विजोत्तमः। पूर्वञ्च तत्प्रवक्ष्यामि भूत्वैकाग्रमनाः शृणु ॥१७॥
कश्चिन् म्लेच्छः पुरा धन्वी मृगयायै वनं गतः। शूकरैणमृगालाभाद् विलङ्घ्याद्रीन् सकन्दरान् ॥१८॥
ददर्श राक्षसं सोऽत्र क्रीडन्तञ्च यदृच्छया। सोऽप्यपश्यच्च तं म्लेच्छं तत्राऽऽगतं धनुर्धरम् ॥१९॥
जघान त्वरितं भीत्या म्लेच्छोऽसौ राक्षसं शरैः। निचखान शरान् तीक्ष्णान् रक्षोहृदि द्रुतं पुनः ॥२०॥
निहत्य राक्षसं बाणैर्म्लेच्छो दुद्राव सत्वरम्। तद्भीत्या कम्पिताङ्गोऽसौ कृत्वेति जीवनं गतम् ॥२१॥
राक्षसोऽपि रुषाऽऽविष्टस्तमन्वधावत द्रुतम्। विस्मृत्य च व्यथां शल्यां सिंहः क्रुद्धो मृगं यथा ॥२२॥
यावत्प्राप्तं न तीरं स ब्रह्मतीर्थस्य चोत्तरम्। वेगेन राक्षसस्तावज्जग्राह तत्तटे द्रुतम् ॥२३॥
जले निष्पीड्य मुष्टिभ्यां राक्षसस्तद्धृदि द्रुतम्। तद्ग्रीवानाडीतः क्रोधाच्छोणितं समपीपिबत् ॥२४॥
व्यसुर्म्लेच्छोऽपि तत्तीरे शिवेति च वदन् भयात्। शैवेन च पुरा प्रोक्तं तदाकर्ण्य धिया स्मरन् ॥२५॥
सोऽपि रक्षो व्यसुस्तत्र शरव्रणप्रपीडितः। पीत्वा तद्रुधिरं मांसं खादंश्च तत्तटे तदा ॥२६॥

---

निर्मल तरङ्ग भएकी पुण्यदात्री ब्रह्मगङ्गा नाम गरेकी नदी आएर अघि ब्रह्माजीको घुँडाबाट निस्किएकी ब्रह्मपदी नाम गरेकी अर्की नदीमा मिसिइन्। तिनै दुई नदीको सङ्गममा ब्रह्माजीले प्रसन्न हुँदै स्नान गर्नुभयो। त्यसैले यो ब्रह्मतीर्थ सबै तीर्थहरूमा उत्कृष्ट तीर्थ बन्यो ॥१२-१३॥

हे बाबु ! त्यहाँ स्नान गरेर ब्रह्माजी यस पर्वतमा चढ्नुभयो। सुखपूर्वक त्यहाँ बसेर ब्रह्माजीले भक्तिपूर्वक भगवान् शङ्करको मन्त्र जप्नुभयो। उहाँको पूजा गर्दागर्दै दिव्य एक हजार वर्ष बितेपछि कार्तिककृष्ण अष्टमीको मध्यरातमा शिवलिङ्गको प्रादुर्भाव भयो। त्यसपछि ब्रह्माजीले भगवान् शङ्करबाट वर प्राप्त गरेर पहिलेजस्तो गरी यस पृथ्वीमा चार किसिमका प्राणीहरूको सृष्टि गर्नुभयो ॥१४-१६॥

समय बित्दै गएपछि कुनै ब्राह्मण यहाँ मुक्त भएको थियो। तिमीलाई म त्यो कथा बताउँछु, एकचित्त भएर सुन। अघि धनुर्धारी कुनै म्लेच्छ शिकार खेल्न वनतिर हिँडेको थियो। मृग नपाएको हुँदा गुफा र पहाडहरू नाघ्दै यहाँ आयो। उसले यहाँ आफूखुसी खेलिरहेको राक्षसलाई देख्यो। राक्षसले पनि त्यस धनुर्धारी म्लेच्छलाई देख्यो। त्यस म्लेच्छले डराएर तुरुन्त राक्षसलाई बाण हान्यो। राक्षसको हृदयलाई ताकेर छिट्ये-छिट्ये उसले फेरि तीखा बाणहरू छोड्यो। त्यो म्लेच्छ राक्षसलाई प्रहार गरेर त्यसको डरले शरीर कपाउँदै अब जीवन गयो भन्ने ठानेर भाग्यो ॥१७-२१॥

रिसाएको सिंहले मृगलाई लखेटेझैँ बाणबाट लागेको घाउको पीडालाई सहदै क्रुद्ध भएको राक्षस त्यसको पछिपछि लाग्यो। ब्रह्मतीर्थको उत्तरपट्टिको तीरमा पुग्नुभन्दा पहिले नै राक्षसले छिट्ये छिट्ये दौडिएर त्यसलाई समातिहाल्यो। राक्षसले पानीभित्र त्यसको हृदयमा मुठीले हिर्कायो। त्यस रिसाहा राक्षसले उसको घाँटीबाट रगत निकालेर पियो ॥२२-२४॥

म्लेच्छ पनि त्यसै तीर्थको तीरमा डरले शिव शिव भन्दै मऱ्यो। राक्षसले पनि अघि भनेको शिवको नाउँ सुनेर मनमनै शिवजीलाई सम्झ्यो। बाणको घाउले पीडित भएर त्यस म्लेच्छको रगत पिउँदापिउँदै, मासु खाँदाखाँदै त्यसै तटमा राक्षसको पनि मृत्यु भयो ॥२५ -२६॥

---

५. प्रववाह, इति न.सं.पु.पाठः।

६. तस्माच्च ब्रह्मतीर्थोऽयं सर्वतीर्थोत्तमोत्तमः, इति न.सं.पु.पाठः।

श्रोत्रियस्य कुले जातो म्लेच्छोऽसौ हि ततो द्विज। ब्रह्मतीर्थजलस्पर्शात्तत्तटे निधनात्तथा ॥२७॥
वेदानां पारगो विप्रः सर्वशास्त्रविशारदः। सत्यवादी सदा सौम्यः पापपराङ्मुखोऽभवत्[७] ॥२८॥
त्यक्त्वा प्रियाप्रियं तात ! स्वमन्वयं गृहं तथा। ब्रह्मचर्येण विप्रोऽसौ दण्डं दधार वै पुनः ॥२९॥
भूत्वा हि याचको नित्यं कञ्चित्कालं निनाय सः। विनिर्गत्य गृहाद्वाह्यं यतिचर्याञ्चचार वै ॥३०॥
इयं तनुर्ममावश्यं पतिष्यति न संशयः। मत्वेति ब्रह्मशर्म्मासौ तीर्थाटनञ्चकार हि ॥३१॥
भ्रमन् नित्यं[८] हि तीर्थानि मेदिन्यां सर्वशो यतिः। देवानां प्रतिमां पश्यन्निहैव प्राप्तवान् द्विज ॥३२॥
पूर्वजन्मस्मृतेश्चात्र तीर्थपुण्यप्रभावतः[९]। ब्रह्मशर्मा पुनः सस्नौ कृष्णाष्टम्याञ्च फाल्गुने ॥३३॥
ब्रह्मचारी ततः स्नात्वा कृत्वा सन्ध्यां नदीतटे[१०]। जप्तुं स निर्जनं चैनं समारुरोह पर्वतम्[११] ॥३४॥
ब्रह्मचारी ततोऽत्रैत्य[१२] चैतल्लिङ्गं ददर्श सः। ज्योतिर्मयं तथाऽव्यक्तं घृतपूर्णशिखामिव ॥३५॥
तदन्तिकं ययौ किञ्चिच्छनैः शनैर्भयान्वितः। वदन् किमिति विप्रोऽसौ चित्रेण चेतसा तदा ॥३६॥
प्रणम्य शिरसा भूमौ तुष्टाव भक्तितो मुहुः। त्रिधा भक्त्या[१३] परिक्रम्य बध्वाञ्जलिं स्वमूर्द्धनि ॥३७॥
ततो जजाप तन्मन्त्रं ब्रह्मशर्मा शिवान्तिके। लक्षमेकं मुदा भक्त्या तन्मनस्को दिवानिशम्[१४] ॥३८॥
पूर्णिमायाः समाप्तौ तज्ज्योतिर्लिङ्गेऽविशद्धि सः। दीपस्य मेलनं दीपशिखायामिव भाजने[१५] ॥३९॥
एतल्लिङ्गे विमुक्तोऽभूद्ब्रह्मशर्मा पुरैव हि। न पुनर्जायते योनौ मरणं नास्ति चाद्यतः ॥४०॥
तेन लब्धं पुनर्वत्स ! चैतल्लिङ्गे च रक्षसा। मत्तः शृणु प्रवक्ष्यामि तत्त्वं तन्निखिलं ध्रुवम् ॥४१॥

---

हे विरूपाक्ष ! त्यसपछि त्यो म्लेच्छ ब्रह्मतीर्थको जल स्पर्श गरेर मरेको हुँदा वेदाध्यायी ब्राह्मणको कुलमा पैदा भयो। सम्पूर्ण वेद र शास्त्रको ज्ञाता त्यो म्लेच्छ सत्यवादी र निष्पाप भयो। हे बाबु ! त्यसपछि उसले प्रिय एवं अप्रिय वस्तु तथा आफ्नो कुल र घरलाई त्याग गरेर ब्रह्मचर्यव्रत धारण गऱ्यो। उसले मगन्ते भएर केही समय बितायो। ऊ घरबाट बाहिर निस्किएर जोगीको जस्तो आचरण गर्दै विचरण गरिरहेको थियो। यो मेरो शरीर अवश्य नाश हुन्छ, यसमा शङ्का छैन भन्ने ठानेर ब्रह्मशर्माले तीर्थयात्रा गऱ्यो ॥२७-३१॥

हे विरूपाक्ष ! त्यसपछि ऊ पृथ्वीमा रहेका सम्पूर्ण तीर्थहरू घुम्दै देवताका मूर्तिहरू हेर्दै यसै ठाउँमा आइपुग्यो। पूर्वजन्ममा यसै ठाउँमा मरेको हुँदा त्यही पुण्यको प्रभावले ब्रह्मशर्माले फाल्गुनकृष्ण अष्टमीका दिन यहाँ स्नान गऱ्यो। त्यसपछि त्यो ब्रह्मचारी ब्रह्मशर्मा स्नान गरेर सन्ध्याकालमा जप गर्नका लागि मानिस नभएको यस पहाडमा उक्लियो ॥३२-३४॥

त्यस ब्रह्मचारीले यहाँ आएर लुकेर रहेको ज्योतिस्वरूप यस लिङ्गलाई घिउले भरिएको बत्तीको ज्वालाजस्तै देख्यो। त्यसपछि बिस्तार बिस्तार डराउँदै यो के रहेछ ? भनेर आश्चर्य मान्दै ब्रह्मचारी त्यस लिङ्गको नजिकमा पुग्यो। उसले शिरले भुईंमा बारम्बार नमस्कार गऱ्यो। तीनै किसिमको भक्ति गर्दै आफ्नो शिरमा अँजुली राखेर लिङ्गको परिक्रमा गऱ्यो ॥३५-३७॥

त्यसपछि ब्रह्मशर्माले शिवजीको नजिकै बसेर शिवमा नै चित्त लगाएर प्रसन्न हुँदै भक्तिपूर्वक रातिदन गरी एक लाख शिवजीको मन्त्र जप्यो। एउटा दियोको ज्वालामा अर्को ज्वाला मिलेजस्तै पूर्णिमा सकिएपछि त्यसै ज्योतिर्लिङ्गमा गएर ऊ मिल्यो। अघि ब्रह्मशर्मा यसै लिङ्गमा मिलेर मुक्त भयो। आजसम्म पनि त्यसलाई कुनै योनिमा जन्मिएर मर्नुपरेको छैन। हे बाबु ! त्यो राक्षसले पनि यसै शिवलिङ्गमा आएर मुक्ति पायो। म त्यो सबै कुरा तिमीलाई बताउँछु, मबाट त्यो कुरा सुन ॥३८-४१॥

---

७. अभूत्पापपराङ्मुखः, इति न.सं.पु.पाठः।
८. भ्रममाणः, इति न.सं.पु.पाठः
९. पूर्वजन्ममृतानत्र तस्मात्पुण्यप्रभावतः, इति न.सं.पु.पाठः।
१०. समत्र वै, इति न.सं.पु.पाठः।
११. नूनं गिरिमेनं समारुहत, इति न.सं.पु.पाठः।
१२. समत्रैत्य, इति न.सं.पु.पाठः
१३. त्रिविधैर्हि, इति न.सं.पु.पाठः
१४. ह्यहर्निशम्, इति न.सं.पु.पाठः
१५. दीपो दीपशिखायाञ्च मेलनञ्चैव भाजने, इति न.सं.पु.पाठः।

अजीजनदसौ रक्षो दैत्यकुले विरूपदृक्। बलेः पुत्रो महावीरो देवासुरैः समादृतः ॥४२॥
महाबलो महावीरः सर्वलोकभयप्रदः। सहस्राक्षाद्बलेर्वीर्यान्न्यूनोऽसौ ह्यभवत्तदा ॥४३॥
पितुः पराक्रमं प्रेक्ष्य बाणस्तप इयेष सः। नारदाद्धि समाकर्ण्याऽऽययावत्र सनिर्जनः ॥४४॥
ब्रह्मतीर्थे ततः स्नात्वा चैनमारुह्य पर्वतम्। एतल्लिङ्गं मुदा भक्त्या चापूपूजदहर्निशम् ॥४५॥
जजाप द्वादशाब्दं स दिव्यं पुनर्विभीषणः। पञ्चोपचारकैर्लिङ्गमपूजयत् स प्रत्यहम्[१६] ॥४६॥
आविर्भूतो महादेवश्चैतल्लिङ्गात्तदा द्विज। व्याचष्ट वचनं बाणं वरं दातुं प्रहर्षितः ॥४७॥

ब्रह्मेश्वर उवाच

वरं वरय भो बाण ! यत्ते मनसि विद्यते। तपसा तोषितोऽहं ते दास्यामि तन्न संशयः ॥४८॥

बाण उवाच

आत्मजोऽहं बलेर्देव पितुस्तुल्यपराक्रमः। सहस्रञ्चैव हस्तानां दीयतां महेश्वर ॥४९॥
त्रैलोक्ये च जयं भूयः सर्वोन्नतं वरन्तथा। देवासुरैरजेयत्वं याचे त्वामेतदीश्वर ॥५०॥

ब्रह्मेश्वर उवाच

एवमस्तु च ते बाण ! यदहं याचितस्त्वया। त्रैलोक्येषु न तिष्ठन्तु योद्धारस्तव सन्निधौ ॥५१॥
यदा च ते ध्वजः स्थानात्पतिष्यति च दानव। भविष्यति महद्युद्धं तदामरैः समं हि ते ॥५२॥
विनाशन्ते सहस्राणां भुजानां हि भविष्यति। कारणात्ते सुतायाश्च विष्णोः सकाशतोऽसुर ॥५३॥
रक्षिष्यामि तदाहं त्वां सङ्कटे युधि निश्चितम्। छेदिते विष्णुना दोर्ष्णि तव बाणासुर ! ध्रुवम् ॥५४॥
तत्र वरं प्रदास्यामि पार्श्वगत्वञ्च तेऽसुर। समक्षञ्चैव देवानां चिरञ्जीवसि चाद्यतः ॥५५॥

---

हे विरूपाक्ष ! त्यो राक्षस बलि राजाको वीर छोरा बाणासुर भएर दैत्यको कुलमा जन्मियो, देवता र राक्षस दुवैले त्यसको सम्मान गर्दथे। शक्तिशाली त्यो दैत्य सबै प्राणीका लागि भयदाता बन्यो। त्यसबेला ऊ आफ्ना पिता बलि र इन्द्रभन्दा पनि बल र सामर्थ्यमा अलिकति मात्र कम थियो। आफ्ना बाबु बलिको बहादुरी देखेर बाणसुरले तपस्या गर्ने इच्छा गऱ्यो। नारदबाट उपदेश लिएर बाणासुर एक्लै यहाँ आयो। त्यसपछि उसले ब्रह्मतीर्थमा स्नान गऱ्यो, यस पर्वतमा चढ्यो र रातिदन भक्तिपूर्वक खुसी हुँदै यस लिङ्गको पूजा गऱ्यो। भयानक त्यस बाणासुरले दिव्य बाह्र वर्षसम्म पञ्चोपचार विधिले दिनदिनै यस शिवलिङ्गको पूजा गर्दै जप गऱ्यो। उसको यस किसिमको पूजा तथा जपबाट खुसी भएर शिवलिङ्गबाट महादेव प्रकट हुनुभयो र त्यसलाई भन्नुभयो ॥४२–४७॥

ब्रह्मेश्वरले भन्नुभयो – हे बाणासुर ! म तिम्रो तपस्याले खुसी भएँ। तिम्रो मनमा जे लागेको छ, त्यो वर माग, म तिमीलाई दिन्छु, यसमा शङ्का छैन ॥४८॥

बाणासुरले भन्यो – हे भगवन् ! म वीरशिरोमणि राजा बलिको पुत्र हुँ। म पनि मेरा पिता बलिजस्तै बलशाली बन्न सकूँ। हे महेश्वर ! मलाई हजार हात दिनुहोस्, म तीनै लोकलाई जित्न सकूँ। देवता र राक्षसले मलाई जित्न नसकून्। हे ईश्वर ! हजुरसित यो वर माग्छु, मलाई यो उत्तम वर दिनुहोस् ॥४९–५०॥

ब्रह्मेश्वरले भन्नुभयो – हे बाणासुर ! तिमीले जे माग्यौ, त्यो कुरा हुन्छ। तीनै लोकमा कोही पनि तिमीसित लड्न नसकून्। हे दानव ! जब राखेको ठाउँबाट तिम्रो झण्डा खस्नेछ, त्यसपछि देवताहरूसित तिम्रो ठूलो युद्ध हुनेछ। हे राक्षस ! तिम्रै छोरीको कारणले गर्दा विष्णुबाट तिम्रा हजार हातको नाश हुनेछ। हे बाणासुर ! विष्णुले तिम्रा हात काटिसकेपछि तिमीलाई सङ्कट परेको बेलामा लडाईँमा मैले तिम्रो रक्षा गर्नेछु। हे असुर ! मेरो नजिकै रहेका तिमीलाई देवताको अगाडि नै म वर दिनेछु। आजदेखि तिमी चिरञ्जीवी भयौ ॥५१–५५॥

---

१६. पञ्चोपचारकैः पूज्यश्चैतल्लिङ्गमहः प्रति, इति न.सं.पु.पाठः।

नेमुनिरुवाच

श्रुत्वेति वचनं रौद्रं लब्धवरोऽसुरोत्तमः। शोणिताख्यां पुरीं शीघ्रं प्रययौ हर्षपूरितः ॥५६॥

कस्मिञ्चित् तत्र[१७] कालान्ते स्वपुत्रीकारणात्पुनः। अनिरुद्धं बबन्धाऽऽशु नृभिस्तद्भवने दृढम् ॥५७॥

तन्मोक्तुञ्च समागत्य कृष्णकार्ष्णिहलायुधाः। युद्धञ्चक्रुर्महत्तीव्रं दानवैः सह तत्र ते ॥५८॥

सुनिर्जित्याऽसुरान् युद्धे विष्णुश्च सूर्यवर्चसा। चकर्त्त करसाहस्रं विहाय तस्य द्वौ करौ[१८] ॥५९॥

तत्र सस्मार रुद्रं सः चक्रक्षतप्रपीडितः। रुद्रोऽपि प्रययौ तत्र तं रक्षितुं गणैः सह ॥६०॥

अभूद्युद्धं तयोस्तीव्रं देवासुरभयङ्करम्। अभून्नादो भृशं तत्र हाहाकारो भयोदितः ॥६१॥

एकात्मानौ च भूत्वा द्वौ देवौ विभाजितौ पुनः। एकात्मानावपि तौ द्वौ जगद्रक्षाय मीलितौ ॥६२॥

प्रेक्ष्य बाणं शिवस्तत्र वज्राहतं द्रुमं यथा। व्याचष्टे वचनं तस्मै वरं दातुञ्च विष्णवे ॥६३॥

रुद्र उवाच

मैवं हि भवता चाऽस्य कर्त्तव्यं निधनं क्वचित्। अस्मै वरो मया दत्तः पुरा तद्भक्तितो हरे ॥६४॥

शृणु बाण ! वरं दास्ये भूयस्त्वद्धार्दतोऽधुना। देवासुरसमक्षेऽद्य सर्वलोकैः सुदुर्लभम् ॥६५॥

अद्यादि पार्श्ववर्त्ती त्वं मदैकांशतनूस्तव। भवत्यक्षं गृहाणाऽऽशु नित्यं मेऽनुचरो भव ॥६६॥

पूजयन्ति ततो लोकास्त्वां मत्पार्श्वस्थितं सदा। चिरञ्जीवमिति ज्ञात्वा महाकाल इति ब्रुवन् ॥६७॥

प्रमथा बाणमेनं वै[१९] अभिषिच्य विमानगम्। देवासुरसमक्षाच्च प्रापयत[२०] ममालयम् ॥६८॥

---

नेमुनिले भन्नुभयो – यस्तो कुरा सुनेर भगवान् शङ्करबाट वर प्राप्त गरेपछि राक्षसराज बाणासुर खुसी हुँदै तुरुन्त शोणितपुरमा गयो। त्यहाँ केही समयपछि आफ्नै छोरीको कारणले गर्दा राजाहरूले उसैको घरमा अनिरुद्धलाई बलियोसित बाँधे। अनिरुद्धलाई छुट्याउन कृष्ण, प्रद्युम्न र बलराम आउनुभयो। त्यहाँ उहाँहरूको राक्षसहरूसित ठूलो युद्ध भयो ॥५६–५८॥

राक्षसहरूलाई जितेर भगवान् कृष्णले सूर्यभन्दा पनि तेजिलो हतियारले हजार हातमध्ये दुई हातलाई छोडेर बाणासुरका अरू हात काटिदिनुभयो। सुदर्शन चक्रको घाउबाट पीडित भएको त्यस बाणासुरले त्यसपछि भगवान् शङ्करलाई सम्झियो। भगवान् शङ्कर पनि बाणासुरको रक्षार्थ आफ्ना गणहरूका साथ त्यहाँ आउनुभयो ॥५९–६०॥

कृष्णजी र भगवान् शङ्करका बीचमा डरलाग्दो युद्ध भयो। सबै सेनाहरू डरले कराउँदै हाहाकार मच्चाउन थाले। एक आत्मा भएर पनि युद्ध गरिरहनुभएका महादेव र कृष्णलाई मायादेवीले छुट्याएकी थिइन्। एउटै आत्मा भएका दुबै जना संसारको रक्षाको निमित्त मिल्नुभयो। वज्रद्वारा काटिएको रुखजस्तो बाणासुरलाई देखेर शिवजीले वर दिनका लागि विष्णु र बाणासुरसित भन्न लाग्नुभयो ॥६१–६३॥

महादेवले भन्नुभयो – हे विष्णु ! तपाईंले यसलाई कहिल्यै पनि मार्न पाउनुहुन्न। यसको भक्तिबाट प्रसन्न भएर मैले अघि यसलाई वर दिएको थिएँ। हे बाणासुर ! तिम्रो मप्रतिको हार्दिकताले गर्दा म तिमीलाई देवता र राक्षसको अगाडि नै दुनियाँका लागि दुर्लभ भएको वर दिन्छु। आजदेखि तिमी मेरो समीपमा रहन पाउनेछौ। तिम्रो शरीर मेरो एक अंशबाट बन्नेछ। तिमी तुरुन्त यो रुद्राक्ष धारण गर र मेरो अनुयायी बन। त्यसपछि मेरो पार्श्ववर्ती भएका तिमीलाई दुनियाँले चिरञ्जीवी ठानेर महाकाल भन्दै पूजा गर्नेछन्। हे प्रमथगण हो ! देवता र राक्षसहरूको समीपमा अभिषेक गरेर यिनलाई विमानमा राखी मेरो लोकमा लैजाओ ॥६४–६८॥

---

१७. तत्र क्वचिच्च, इति न.सं.पु.पाठः।
१८. विहाय द्वौ करौ तस्य चकर्त्त च सहस्रकम्, इति न.सं.पु.पाठः।
१९. भो प्रमथाः समेनं वै, इति न.सं.पु.पाठः।
२०. चानयध्वम्, इति न.सं.पु.पाठः।

नेमुनिरुवाच

इत्याकर्ण्य वचः शैवमभिषेकं ददुस्तदा। बाणासुराय ते तत्र निन्यू रुद्रपुरं हि तम् ॥६९॥
उषाया अनिरुद्धेन विवाहे विहिते सति[२१]। द्वारवत्यां गते कृष्णे शङ्करे च तिरोहिते ॥७०॥
प्रमथानां गरिष्ठोऽभून्महाकाल इति श्रुतः। ब्रह्मतीर्थजले स्नात्वा देवलिङ्गप्रभावतः ॥७१॥
चतुःषष्टिगणैर्नित्यमत्र स्थितैरहर्निशम्। पार्वत्या सहितैरेतल्लिङ्गं नित्यमुपास्यते[२२] ॥७२॥
कार्त्तिकेयेश्वरो यत्र चन्द्रकान्त्युपलाचले। अधो याम्यनितम्बाच्च चन्द्रदीप्तिनदीमुखात्[२३] ॥७३॥
सिद्धरसः समुद्भूतो यत्र कूटे विराजते। तद्रसस्पर्शनाद्धातुः सद्यः स्वर्णं भवेत् किल ॥७४॥
तत्र गत्वा महालिङ्गं सम्पूज्याऽऽशु सुभक्तितः। वाञ्छितं लभ्यते[२४] सद्यश्चाऽभिव्रज विरूपदृक् ॥७५॥

ब्रह्मेश्वरस्याऽद्य विरूपनेत्र ! प्रोक्तं माहात्म्यं निखिलं मया ते।
ब्रह्माख्यतीर्थस्य विशेषतो हि वक्ष्यामि भूयः शृणु वत्स चाऽन्यत् ॥७६॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां
ब्रह्मेश्वरमाहात्म्यं नाम षोडशाधिकशततमोऽध्यायः ॥११६॥

---

नेमुनिले भन्नुभयो – यस्तो भगवान् शङ्करको वचन सुनेर शिवजीका दूतहरूले बाणासुरलाई अभिषेक गरे र उनीहरूले त्यसलाई रुद्रलोकमा लगे। त्यसपछि भगवान् कृष्ण द्वारका जानुभयो भने भगवान् शङ्कर त्यसै ठाउँमा विलीन हुनुभयो। अनि उषाका साथ अनिरुद्धको विवाह भयो। ब्रह्मतीर्थको जलमा स्नान गरेर भगवान् शङ्करको लिङ्गको पूजा गरेको हुँदा त्यसैका प्रभावले बाणासुर प्रमथगणमा श्रेष्ठ महाकाल हुन पुगे ॥६९-७१॥

चौंसठ्ठी योगिनीहरू यसै ठाउँमा बसेर सधैं पार्वतीले सहित विराजमान हुनुहुने भगवान् शिवको लिङ्गको आराधना गर्दछन्। जुन चन्द्रकान्तमणि पर्वतमा कार्तिकेश्वर भगवान् बस्नुभएको छ, त्यसैका दक्षिणपट्टिबाट चन्द्रदीप्ति नदी बगेकी छन्। जुन पर्वतको शिखरमा सिद्धरसको उत्पत्ति भएको छ, त्यस रसलाई स्पर्श गऱ्यो भने धातु पनि सुन हुन्छ। हे विरूपाक्ष ! छिट्ये त्यहाँ गएर भक्तिपूर्वक त्यस महालिङ्गको पूजा गर, तुरुन्त इच्छा लागेको फल पाउनेछौ, गइहाल ॥७१-७५॥

हे विरूपाक्ष ! मैले तिमीलाई आज ब्रह्मेश्वर लिङ्गको र विशेष गरी ब्रह्मतीर्थको सम्पूर्ण माहात्म्य बताएँ। हे बाबु ! म फेरि भन्छु, अरु सुन ॥७६॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा ब्रह्मेश्वर शिवलिङ्गको माहात्म्यनामक
एकसय सोह्रौं अध्याय पूरा भयो।

---

२१. विवाहित उषायाश्च ह्यनिरुद्धेन वै समम्, इति न.सं.पु.पाठः। २२. एतल्लिङ्गमुपासन्ते पार्वत्या सहितं सदा, इति न.सं.पु.पाठः।
२३. स्रवत्, इति न.सं.पु.पाठः। २४. वाञ्छितार्थं लभेत्, इति न.सं.पु.पाठः।

# सप्तदशाधिकशततमोऽध्यायः

## स्कन्दतीर्थस्कन्देश्वर शिवलिङ्गयोर्महिमा

### स्कन्द उवाच

ब्रह्मतीर्थे ततः स्नात्वा ब्रह्मेश्वरप्रपूजनात्। ब्रह्मज्ञानी ह्यभूद् विप्रश्चागस्त्योऽसौ विकिल्विषः ॥१॥
भूयोऽसौ मुनिना सार्द्धं यत्र तप्तं पुरा मया। मत्तीर्थे हि सुखं स्नात्वा तमीश्वरमपूपुजत् ॥२॥
तपःकृष्णद्वितीयायां निराहारो महानिशि। लिङ्गं समर्च्य माहात्म्यमपृच्छन्नेमुनिं हि सः[1] ॥३॥

### विरूपाक्ष उवाच

भगवञ्छ्रोतुमिच्छामि सर्वज्ञाद् भवतः[2] प्रभो। एतल्लिङ्गस्य माहात्म्यं तीर्थस्य च विशेषतः ॥४॥
समुद्भूतं कदा[3] लिङ्गं कार्त्तिकेयेश्वरं श्रुतम्। को मुक्तोऽत्र च तीर्थे वा वद मुनिजनेश्वर[4] ॥५॥

### नेमुनिरुवाच

पूर्वं तपश्चकारात्र वधाय तारकस्य च। द्वादशाब्दञ्च दिव्यानां स्कन्दस्तीव्रं विरूपदृक् ॥६॥
चन्द्रदीप्तिर्नदी श्रेष्ठा चन्द्रकान्तोपलोद्भवा। सिद्धद्रवा च संयोगे तयोः सस्नौ शिवात्मजः[5] ॥७॥
स्कन्दतीर्थं ततः ख्यातं पृथिव्यामतिदुर्लभम्[6]। तत्र स्नात्वा नरो भक्त्या स्कन्दलोकं प्रगच्छति ॥८॥
तत्तीर्थे स तदा स्नात्वा चात्रागत्य ततो द्विज। स्थापितवान्यथाभक्त्या चैतल्लिङ्गं गुहान्तरे ॥९॥
जजाप तन्मनुं स्कन्दो जयाय स्वात्मनो भृशम्। द्वादशाब्दं हि दिव्यानां लिङ्गमभ्यर्च्य सर्वदा[7] ॥१०॥

---

## अध्याय – ११७

### स्कन्दतीर्थ र स्कन्देश्वर शिवलिङ्गको महिमा

कुमार स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! त्यसपछि विरूपाक्षले ब्रह्मतीर्थमा स्नान गरेर ब्रह्मेश्वरको पूजा गरे। त्यसपछि उनी पापबाट मुक्त भएर ब्रह्मज्ञानी भए। फेरि विरूपाक्ष नेमुनिका साथमा हिँडे। उनले अघि जहाँ मैले तपस्या गरेको थिएँ, त्यसै तीर्थमा गएर सुखपूर्वक स्नान गरी स्कन्देश्वर भगवान्को पूजा गरे। माघकृष्ण द्वितीयाका दिन निराहार बसी राति शिवलिङ्गको पूजा गरेर विरूपाक्षले नेमुनिसँग त्यस लिङ्गको माहात्म्य सोधे ॥१–३॥

विरूपाक्षले भने – हे सर्वज्ञ प्रभु ! हजुरसित म यो लिङ्ग र विशेष गरी यस तीर्थको माहात्म्य सुन्न चाहन्छु। हे मुनीश्वर ! कार्तिकेयेश्वर लिङ्गको उत्पत्ति कहिले भएको थियो ? यस तीर्थमा कसले मुक्ति पाएको थियो ? सबै कुरा मलाई बताउनुहोस् ॥४–५॥

नेमुनिले भन्नुभयो – हे विरूपाक्ष ! अघि कार्तिक स्वामीले तारकासुरलाई मार्नका लागि दिव्य बाह्र वर्षसम्म यसै ठाउँमा कठोर तपस्या गर्नुभएको थियो। कार्तिक स्वामीले चन्द्रकान्तमणिबाट पैदा भएकी श्रेष्ठ चन्द्रदीप्ति नदी र सिद्धरसबाट पैदा भएकी नदीको सङ्गमस्थलमा स्नान गर्नुभयो। त्यसैले पृथ्वीमा दुर्लभ भएको त्यस तीर्थलाई स्कन्दतीर्थ भनियो। भक्तिपूर्वक मानिसले त्यहाँ स्नान गऱ्यो भने त्यो स्कन्दलोकमा जान्छ ॥६–८॥

हे विरूपाक्ष ! त्यस तीर्थमा स्नान गरेर यहाँ गुफाभित्र आई कार्तिक स्वामीले भक्तिपूर्वक यस लिङ्गको स्थापना गर्नुभएको थियो। कार्तिक स्वामीले आत्मविजयी बन्न रातिदन दिव्य बाह्र वर्षसम्म यस लिङ्गको पूजा गरेर भगवान् शङ्करको मन्त्र जप्नुभयो ॥९–११॥

---

१. पूज्य लिङ्गं माहात्म्यं तदपृच्छन्नेमुनिं हि सः, इति न.सं.पु.पाठः।
२. त्वयि सर्वविदि, इति न.सं.पु.पाठः।
३. कदा समुद्भवम्, इति न.सं.पु.पाठः।
४. मे मुनिकेश्वर, इति न.सं.पु.पाठः।
५. सिद्धद्रवेण संयोगे स्कन्दः सस्नौ हि तत्र वै, इति न.सं.पु.पाठः
६. तस्माच्च स्कन्दं तद्विख्यातं भुवि दुर्ल्लभम्, इति न.सं.पु.पाठः।
७. दिव्यानामर्च्य लिङ्गमहर्निशम्, इति न.सं.पु.पाठः।

आविर्भूतस्ततो लिङ्गाद्रुद्रस्तस्मै वरं ददौ। त्रैलोक्यविजयार्थाय दैत्यशत्रुविमर्दकम् ॥११॥
अंशो रुद्रात्मनः स्कन्दो लब्ध्वा तस्माद्वरं तथा। हन्तुं दानवसैन्यानि सितधारातटं ययौ ॥१२॥
शृणु वक्ष्यामि ते भूयः स्कन्दतीर्थप्रशंसनम्। कौचित् कोलौ विमुक्तौ च लिङ्गस्यास्य प्रभावतः[८] ॥१३॥
अशौचाज्जीवितौ विप्रावाजन्म भ्रमणे रतौ। तद्दोषात्तौ समुद्भूतौ कोलयोन्यां वनेचरौ ॥१४॥
फलमूलाशनौ नित्यं क्षुत्पिपासाप्रपीडितौ। वने वने तदाहारं मार्गमाणावितस्ततः ॥१५॥
एकदा मिलितौ चात्र ह्यन्यतश्चागतौ वनात्। तौ शूकरौ मिथः प्रेक्ष्य चेर्ष्यावन्तौ बभूवतुः ॥१६॥
युयुधतुर्गिरौ चात्र तौ हि मिथो जयैषिणौ। भृशं तुण्डप्रहारैश्च दन्ताघातैस्तथापरैः ॥१७॥
सम्प्रहरन्तौ च युद्धे तौ परस्परजयेच्छया[९]। तत्रैव प्राप्तवन्तौ च स्कन्दतीर्थतटे तदा ॥१८॥
एकस्तुण्डप्रहारेण ह्याकण्ठं मज्जितो जले[१०]। आकण्ठमस्तकञ्चैकः प्राविशत्तज्जले पुनः ॥१९॥
सन्दश्य तौ मिथो दन्तैर्जलादुत्तरतुः पुनः। त्यक्त्वा युद्धं मिथः प्रेक्ष्य चाननं विग्रहं तथा ॥२०॥
एकोऽभून्नरदेहोऽसौ जलस्पर्शात् च कोलकः[११]। नरवक्त्रस्तथा चैको विषमौ कोलविग्रहौ ॥२१॥
ज्ञानयुक्तावभूतां तौ चरन्तावचले पुनः[१२]। अत्र प्राप्तौ विरूपाक्ष ! चित्रं सम्मिलितौ पुनः ॥२२॥
चैत्रशुक्लत्रयोदश्यामेतल्लिङ्गे तदा हि तौ। स्वाङ्गं च स्वाननं विप्र घृष्टवन्तौ[१३] हि कण्डूतः ॥२३॥
चक्रतुरत्र वासं तौ चैकाब्दं हि निरन्तरम्। निवेद्य फलमूलानि चैतल्लिङ्गोपरि ध्रुवम् ॥२४॥

---

त्यसपछि यसै लिङ्गबाट भगवान् शङ्कर प्रादुर्भाव हुनुभयो र कार्तिक स्वामीलाई सम्पूर्ण शत्रुलाई नाश गरेर तीनै लोक विजय गर्न सक्ने वर दिनुभयो। रुद्रको अंश लिएर जन्मिनुएका कार्तिक स्वामी भगवान् शङ्करबाट वर प्राप्त गरी दानवका सेनाहरूलाई मार्न सितधारा नदीको तीरमा जानुभयो ॥११-१२॥

म फेरि तिमीलाई यो स्कन्दतीर्थको माहात्म्य बताउँछु, सुन – कुनै बनेल यसै लिङ्गको अनुग्रहले गर्दा मुक्त भएको थियो। जन्मभर अपवित्र तरिकाले जीवन निर्वाह गर्दै बाँचुञ्जेल भ्रमण गर्ने कुनै दुई ब्राह्मण त्यसै पापले गर्दा जङ्गली बनेलको योनिमा जन्मिए। सधैं फलफूल र कन्दमूलमात्र खाने, भोक र प्यासले पीडित भएका ती दुई बनेल वनमा यताउति हिँडेर आहारा खोज्न थाले ॥१३-१५॥

एक दिन यसै वनमा ती दुई बनेलको भेट भयो। छुट्टाछुट्टै वनबाट आएका ती दुई एक अर्कालाई देखेर ईर्ष्या गर्न थाले। परस्पर विजयको आकाङ्क्षा राख्ने ती दुबै बनेल आपसमा थुतुनो प्रहार गर्दै यसै पहाडमा खूबसित युद्ध गर्न थाले। आपसमा विजयको इच्छा राखेर प्रहार गर्दै ती दुई बनेल त्यस समयमा स्कन्दतीर्थको तटमा पुगे। दुबै जित्नका लागि कोसिस गर्दै थिए। एउटाले अर्कालाई थुतुनाले हान्यो र पानीमा डुबाइदियो र आफू पनि घाँटीसम्म डुब्ने गरी पानीमा पस्यो। दुबै बनेल दाह्राले हानाहान गर्दै पानीबाट बाहिर निस्किए ॥१६-१९॥

दुबैले आ–आफ्नो मुख र शरीर हेरेर युद्ध गर्न छाडे। जलको स्पर्शले गर्दा एउटाको शरीर मानिसका जस्तो र मुख बनेलको जस्तो भयो। अर्काको मुख मानिसको जस्तो र शरीर बनेलको जस्तो असमान भयो। त्यसपछि ती दुबैलाई ज्ञान भयो, परस्पर मिलेर पहाडमा हिँड्दै फेरि यसै ठाउँमा आइपुगे। चैत्रशुक्ल त्रयोदशीका दिन ती दुबै बनेलले त्यही स्कन्देश्वर लिङ्गमा चिलाई मेट्न शरीर घसारे र थुतुनो दले। एक वर्षसम्म तिनीहरू त्यहीँ निरन्तर बसे। फल तथा कन्दमूल यस लिङ्गमा चढाए ॥२०-२४॥

---

८. कश्चित्कोलो विमुक्तोऽभूच्चैतल्लिङ्गप्रसादतः, इति न.सं.पु.पाठः। ९. परिवर्त्तनौ, इति न.सं.पु.पाठः।
१०. प्रहारयन्तौ चान्योन्यं युद्धे च विजयेप्सया, इति न.सं.पु.पाठः।
११. तुण्डाघातेन चैकस्तज्जले निमज्जितागलः, इति न.सं.पु.पाठः। १२. कोलानानां जलस्पृशात्, इति न.सं.पु.पाठः।
१३. चैतस्मिन्नचले चरन्, इति न.सं.पु.पाठः।

ततः संवत्सरान्ते तौ पञ्चत्वमत्र सङ्गतौ। चैत्रशुक्लत्रयोदश्यामेतल्लिङ्गस्पृशौ पुरा ॥२५॥
ततश्चाऽत्राऽऽगता दूता रुद्रस्य च शिवाज्ञया। ववृषुः[१४] पुष्पवर्षाणि वाद्यगीतैः प्रमोद्य च ॥२६॥
तावास्थाय हि तद्याने शिवदूताः समागताः। निन्युः शिवपुरं तौ तद्गणत्वेनाऽभिषिच्य च ॥२७॥
अद्यापि समवेतौ तौ रुद्रपार्श्वगतावुभौ। प्रसादाच्चैव लिङ्गस्य तीर्थस्य च विरूपदृक् ॥२८॥
भूयो गच्छ विरूपाक्ष ! मृगेन्द्रशिखरोपरि। शतरुद्रो हि यत्राऽऽस्ते पूर्वदेशे ह्यतो ध्रुवम् ॥२९॥

प्रोक्तं मयैतत्खलु ते महत्त्वं स्कन्देश्वरस्याऽद्य विरूपनेत्र।
वक्ष्यामि भूयः शृणु विप्र ! चाऽन्यन् मृगेन्द्रकूटाश्रिततन्महत्त्वम् ॥३०॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालामाहात्म्ये विरूपाक्षतीर्थयात्रायां
स्कन्दतीर्थस्कन्देश्वरयोर्माहात्म्यं नाम सप्तदशाधिकशततमोऽध्यायः ॥११७॥

---

एक वर्ष पुगेपछि चैत्रशुक्ल त्रयोदशीका दिन त्यस लिङ्गको स्पर्श गरेर दुबैले प्राण त्याग गरे। शिवजीको आज्ञाबमोजिम शिवदूतहरू यहाँ आई पुष्पवृष्टि गर्दै गाना बजाउँदै अभिषेक गरी ती दुई बनेललाई यानमा राखेर शिवलोक लगे। हे विरूपाक्ष ! यस लिङ्ग र तीर्थको अनुग्रहले गर्दा ती दुबै आज पनि भगवान् शङ्करका पार्श्ववर्ती भएर रहेका छन् ॥२५-२८॥

हे विरूपाक्ष ! यहाँबाट पूर्वपट्टि मृगेन्द्र शिखर छ, त्यसमाथि शतरुद्र भगवान् रहनुभएको छ, त्यसै ठाउँमा जाऊ। हे विरूपाक्ष ! मैले तिमीलाई स्कन्देश्वर भगवान्को यो माहात्म्य बताएँ। म पुनः मृगेन्द्रकूटपर्वतको प्रसिद्ध माहात्म्य तिमीलाई भन्छु, सुन ॥२९-३०॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा स्कन्दतीर्थ र स्कन्देश्वर शिवलिङ्गको महिमानामक
एकसय सत्रौं अध्याय पूरा भयो।

---

१४. वर्षयन्, इति न.सं.पु.पाठः।

# अष्टदशाधिकशततमोऽध्यायः

## नारसिंहतीर्थशतरुद्रेश्वरशिवलिङ्गयोर्महिमा

स्कन्द उवाच

मम तीर्थे ततः स्नात्वा प्रजहौ प्रकृतिं स्वकाम्। महाज्ञानैः समायुक्तस्तेजस्वी च विकिल्विषः ॥१॥
भूयोऽगमद्विरूपाक्षो मुनिना तेन वै समम्। यत्रास्ते शतरुद्रोऽसौ हर्षपूर्णमनोरथः ॥२॥
नृसिंहाख्यमहातीर्थे स्नात्वाऽऽरोहद् गिरिं पुनः[1]। शतरुद्रं मुदा भक्त्याऽपूजयत्[2] च विरूपदृक् ॥३॥
ततः कृष्णतृतीयायां भक्त्या पञ्चोपचारकैः। पूजितवानुपोष्यार्य ! नक्तव्रतं समाचरन् ॥४॥
अपृच्छन्नेमुनिं भूयस्तन्निशायां विरूपदृक्। विनिद्रो भक्तियुक्तोऽसौ माहात्म्यं तीर्थलिङ्गयोः ॥५॥

विरूपाक्ष उवाच

नमस्ते मुनिशार्दूल ! श्रोतुकामश्च त्वत् पुनः[3]। एतेषाञ्चैव रुद्राणां माहात्म्यं जननं तथा ॥६॥
तत्तीर्थस्य माहात्म्यञ्च प्रादुर्भावं पुनर्विभो। एतल्लिङ्गप्रसादाद्धि को मुक्तोऽत्र वद प्रभो ॥७॥

नेमुनिरुवाच

हिरण्यकशिपुं हत्वा नृसिंहोऽत्रागमत्पुरा। चचाराऽस्मिन्वने शैले कञ्चित्कालं महासुखम् ॥८॥
ज्येष्ठसिते दशम्यां स दावप्रपीडितः पुरा। गङ्गामावाहयत् स्नातुं घर्मेणार्तस्तदा[4] द्विज ॥९॥
ज्येष्ठिला सा समाख्याता तस्मान्नदी वरोद्भवा। नित्यं तस्या जले स्नात्वा[5] चक्रे विहारमादृतम् ॥१०॥
भूयः सस्मार गङ्गां स पश्चिमायां ततो दिशि[6]। मृगेन्द्राद्रिसमुद्भूता विश्वगङ्गेति विश्रुता ॥११॥

---

## अध्याय - ११८

### नारसिंहतीर्थ र शतरुद्रेश्वर शिवलिङ्गको महिमा

कुमार स्वामीले भन्नुभयो – विरूपाक्ष मेरो तीर्थमा स्नान गरेर आफ्नो प्रकृति अर्थात् पाशविक प्रवृत्तिबाट मुक्त भई ठूला ज्ञानी भए। उनले आफूभित्र रहेको अज्ञान सबै हटाए। त्यसपछि विरूपाक्ष नेमुनिलाई साथमा लिएर मनोरथ पूरा भएकाले हर्षित हुँदै शतरुद्र भगवान् बस्नुभएको स्थानमा गए। नृसिंह नाम गरेको महातीर्थमा स्नान गरेर विरूपाक्ष त्यस पर्वतमा चढे। उनले प्रसन्न भएर शतरुद्र भगवान्‌को भक्तिपूर्वक पूजा गरे ॥१-३॥

हे अगस्त्य मुनि ! माघकृष्ण तृतीयाका दिन उनले भक्तिपूर्वक रातभरि उपवास तथा जाग्राम बसेर पञ्चोपचार विधिले शिवलिङ्गको पूजा गरे। विरूपाक्षले फेरि त्यसै दिन राति जाग्राम बसेर तीर्थ र लिङ्गको माहात्म्यको बारेमा नेमुनिसित भक्तिपूर्वक सोधे। हे मुनिश्रेष्ठ हजुरलाई नमस्कार छ। म यस शिवलिङ्गको माहात्म्य र उत्पत्तिका विषयमा हजुरबाट जान्न चाहन्छु। हे ज्ञानी प्रभु ! त्यो तीर्थको माहात्म्य र उत्पत्ति पनि सुन्न चाहन्छु। यस लिङ्गको अनुग्रहबाट को मुक्त भएको थियो ? त्यो सबै मलाई बताउनुहोस् ॥४-७॥

नेमुनिले भन्नुभयो – अघि नृसिंह भगवान् हिरण्यकशिपुलाई मारेर यसै वनमा आउनुभएको थियो। उहाँ आनन्दसित केही समयसम्म यस पर्वतको जङ्गलमा घुम्नुभयो। हे विरूपाक्ष ! ज्येष्ठशुक्ल दशमीका दिन उहाँले वनको डढेलो र घामको तातोको तापबाट पीडित भएर स्नान गर्न गङ्गाको आवाहन गर्नुभयो। त्यसबाट त्यहाँ ज्येष्ठिला नाम गरेकी उत्कृष्ट नदी पैदा भइन्। उहाँले त्यस नदीको जलमा स्नान गरेर प्रशंसनीय क्रीडा गर्नुभयो। त्यसपछि उहाँले पश्चिम दिशालाई पवित्र तुल्याउन गङ्गाको स्मरण गर्नुभयो र मृगेन्द्र पर्वतबाट विश्वगङ्गा नाम गरेकी गङ्गा पैदा भइन् ॥८-११॥

---

१. स्नात्वा गिरिं समारुहत्, इति न.सं.पु.पाठः।
२. अपूपूजत्, इति न.सं.पु.पाठः।
३. श्रोतुकामः पुनस्त्वयि, इति न.सं.पु.पाठः।
४. घर्मार्तिस्तस्तदा, इति न.सं.पु.पाठः।
५. जलाप्लाव्य, इति न.सं.पु.पाठः।
६. पातुं तत्पश्चिमां दिशि, इति न.सं.पु.पाठः।

सङ्गमे स तयोः सस्नौ ज्येष्ठिलाविश्वगङ्गयोः । ज्येष्ठस्य पूर्णिमायाञ्च ज्येष्ठर्क्षसंयुते दिने ॥१२॥
मेषाख्यायाञ्च सङ्क्रान्त्यां युक्तायां रविणा हरिः । तयोः सुसङ्गमे स्नात्वा तीर्थेऽस्मिन् स[७] समागमत् ॥१३॥
समाराधितवान् भक्त्या शतरुद्रं नृकेसरी । एते रुद्राः समुद्भूताः शतलिङ्गमयास्तदा[८] ॥१४॥
एतानि चैव लिङ्गानि चार्चितवान्नृकेसरी । द्वादशञ्चैव दिव्यानां फलपुष्पोपहारकैः ॥१५॥
कश्चिन्मुक्तो नृपश्रेष्ठश्चैतल्लिङ्गप्रसादतः । कालान्तरे च कस्मिँश्चित्कलौ[९] प्राप्ते विरूपदृक् ॥१६॥
आसीन्नृपवरः पूर्वं सूर्यकेतुरिति श्रुतः । क्वचित्कालान्तरे सोऽपि सार्वभौमो ह्यभूद् द्विज ॥१७॥
कृत्वा निःक्षत्रियां रामो ददौ तस्मै रसां पुरा । पुनः पुनर्नृपवृन्दे चैकविंशतिधाहते[१०] ॥१८॥
द्वादशाब्दं सुखं भुक्त्वा सूर्यकेतू रसामिमाम् । अर्पयामास तां[११] भूयस्तस्मै रामाय भक्तितः ॥१९॥
नमस्ते भगवन् राम त्वद्दत्तां क्ष्मां गृहाण वै । वाञ्छाम्यहं न राज्यञ्च स्वप्नवत् प्राणिनां सुखम् ॥२०॥
वाञ्छाम्यहं वनञ्चैकं तपःस्थानञ्च केवलम् । नमस्ते राम ! गच्छामि सत्यमेतत्तपोवनम् ॥२१॥
राज्यं समर्प्य रामाय तपःकर्तुं समाययौ । ज्ञात्वा हिमालयं श्रेष्ठं पत्नीपुत्रीसुतैः सह ॥२२॥
द्वादशाब्दं तपस्तेपे सूर्यकेतुर्हिमालये[१२] । नारसिंहमहातीर्थे स्नात्वा नित्यञ्च भक्तितः ॥२३॥
पञ्चोपचारकैर्नित्यं लिङ्गान्येतानि सर्वदा । अपूपूजन्मुदा भक्त्या सूर्यकेतुरहर्निशम् ॥२४॥
माघशुक्लस्य पञ्चम्यां प्रद्युम्नाय नृपोत्तमः । चन्द्रावतीं सुतां श्लक्ष्णां प्रददौ विधिवद् द्विज ॥२५॥
कृत्वा परिणयं कामो ययौ द्वारवतीं पुनः । विमोच्य वाग्वतीं बन्धान्महेन्द्रदमनात्तथा ॥२६॥
अष्टम्यां माघशुक्लायामाविर्बभूव शङ्करः । व्याजहार वचस्तस्मै वरं दातुं विरूपदृक् ॥२७॥

---

उहाँले ज्येष्ठा नक्षत्रले युक्त भएको ज्येष्ठ पूर्णिमाको दिन ज्येष्ठिला नदी र विश्वगङ्गा नदीको सङ्गममा स्नान गर्नुभयो । भगवान् नृसिंह मेषराशिमा सूर्य गएको मेषसङ्क्रान्तिका दिन ती नदीको सङ्गममा स्नान गरेर यस ठाउँमा आउनुभयो । नृसिंह अवतार भगवान्ले भक्तिपूर्वक शतरुद्रको आराधना गर्नुभयो । उहाँले आराधना गरेपछि सयवटा शिवजीका लिङ्ग उत्पन्न भए । भगवान् नृसिंहले दिव्य बाह्र वर्षसम्म फलफूल चढाएर यी लिङ्गहरूको अर्चना गर्नुभयो । हे विरूपाक्ष ! केही समयपछि कलियुगमा यस लिङ्गको अनुग्रहबाट कुनै राजाले मुक्ति प्राप्त गरेका थिए ॥१२-१६॥

हे विरूपाक्ष ! प्राचीन कालमा सूर्यकेतु नाम गरेका एक राजा थिए । उनी केही समयपछि चक्रवर्ती राजा भए। परशुरामले एक्काइस पटकसम्म घुम्दै दुष्ट राजालाई मारेर सम्पूर्ण पृथ्वीलाई क्षत्रियरहित बनाएपछि तिनै राजालाई यस पृथ्वीको शासनभार जिम्मा लगाएका थिए । राजा सूर्यकेतुले पृथ्वीको बाह्र वर्षसम्म भोग गरे र पुनः भक्तिपूर्वक परशुरामलाई नै पृथ्वी सुम्पिँदै भने – हे परशुराम ! हजुरलाई नमस्कार छ। तपाईंले दिनुभएको यो पृथ्वी फिर्ता लिनुहोस्। म यो जीवनलाई स्वप्नसरी चिन्तन गर्दै राज्यको सुखभोग गर्न चाहन्न। हे परशुराम ! मलाई तप गर्ने स्थान भएको वनको चाहना छ। त्यसैले म तपोवनमा जान्छु, यो सत्य कुरा हो ॥१७-२१॥

त्यसपछि परशुरामलाई राज्य सुम्पिए र उनी पत्नी, छोरी र छोराहरूलाई साथमै लिएर तपस्या गर्नका लागि हिमालय पर्वत नै उत्तम छ भन्ने ठानेर त्यहाँ गए। राजा सूर्यकेतुले भक्तिपूर्वक नित्य नृसिंह महातीर्थमा स्नान गरेर बाह्र वर्षसम्म यस ठाउँमा तप गरे। सधैं प्रसन्न हुँदै राजा सूर्यकेतुले भक्तिपूर्वक पञ्चोपचार विधिद्वारा यी लिङ्गहरूको रातिदन आराधना गरे ॥२२-२४॥

माघशुक्ल पञ्चमीका दिन ती राजाले विधिपूर्वक प्रद्युम्नलाई आफ्नी सुन्दरी पुत्री दान दिए। प्रद्युम्नले विवाह गरेर वाग्वतीलाई बन्धन छुट्याए र आफू द्वारवती गए। हे विरूपाक्ष ! माघशुक्ल अष्टमीका दिन राजा सूर्यकेतुलाई वर दिनका लागि भगवान् शङ्कर प्रकट हुनुभयो र भन्नुभयो ॥२५-२७॥

---

७. अत्रैव च, इति न.सं.पु.पाठः ।
८. शतलिङ्गात्मकास्तदा, इति न.सं.पु.पाठः ।
९. कालान्ते कतिचित्तस्मात्कलौ, इति न.सं.पु.पाठः ।
१०. वारं वारं नृपोद्‌भूते एकविंशतिधाकृते, इति न.सं.पु.पाठः ।
११. प्रत्यर्पिता रसा, इति न.सं.पु.पाठः ।
१२. सूर्यकेतुः समत्र वै, इति न.सं.पु.पाठः ।

शतरुद्र उवाच

सूर्यकेतो नृपश्रेष्ठ वरं दास्यामि ते शृणु। यत्त्वया काङ्क्षितं चित्ते[१३] तथाऽस्तु ते हि साम्प्रतम् ॥२८॥
भवाद्यादि गणश्रेष्ठो मत्प्रसादान्नृपोत्तम। देवानामसुराणां त्वं वन्दनीयोऽमरो भव ॥२९॥

नेमुनिरुवाच

इत्येवं शङ्करस्तस्मै वरं दत्त्वा तदा ध्रुवम्। अन्तर्दधे किलात्रैव[१४] स्वभासा द्योतयन् गिरिम् ॥३०॥
ववृषुः पुष्पवर्षाणि लाजासारं तथामराः। नेदुर्दुन्दुभयो व्योम्नि गीततालरवैः समम् ॥३१॥
समेत्यात्र गणा रौद्रास्तमास्थाय च पुष्पके। सपरिवारमैश्वर्यैर्निन्युः शिवपुरं मुदा ॥३२॥
सम्प्रेक्ष्य तं विमानस्थं सर्वे लोकाः सुरासुराः। साधु साध्विति हर्षञ्च समुचुः[१५] सर्वशस्तदा ॥३३॥
यस्तत्तीर्थजले स्नात्वा[१६] चाऽऽरोहति त्विमं गिरिम्। पदेपदेऽश्वमेधानां फलं प्राप्नोत्यसंशयः ॥३४॥
पश्यति शतरुद्रं यो रुद्रगणो भविष्यति। शतजन्मार्जितैनोभिर्विमुक्तोऽसौ ततो द्विज ॥३५॥
वाग्वतीप्रभवे पुण्ये पञ्चतीर्थे च भक्तितः। स्नायाच्च विधिवद्विप्र ! भवेत्[१७] कोटिगुणं फलम् ॥३६॥
पूर्वस्यां दिश्यतो[१८] भूयो गच्छाऽधुना विरूपदृक्। काकेश्वरो हि यत्राऽऽस्ते विदूरे योजनार्द्धके ॥३७॥
सम्प्रोक्तमेतद्धि मया महत्त्वं[१९] बीजं परं प्राणभृतां सुखाद्यम्।
मुक्तिं ददानाय च रुद्रनाम्ने[२०] तुभ्यं विरूपेक्षणशूलिने वै ॥३८॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां
नारसिंहतीर्थशतरुद्रेश्वरयोर्माहात्म्यं नामाष्टादशाधिकशततमोऽध्यायः ॥११८॥

---

शतरुद्रले भन्नुभयो – हे राजा सूर्यकेतु ! म तिमीलाई वर दिन्छु, सुन। अहिले तिमीले जे इच्छा गरेका छौ, त्यही कुरा पूर्ण होस्। मेरो अनुग्रहले गर्दा आजदेखि तिमी प्रमथ आदि गणहरूको अग्रणी भयौ। देवता र राक्षसहरूका पनि वन्दनीय तिमी अमर बन्यौ ॥२८-२९॥

नेमुनिले भन्नुभयो – सूर्यकेतु राजालाई यसरी वर दिएर भगवान् शङ्कर आफ्नो कान्तिले त्यस पर्वतलाई प्रकाशतमान बनाउँदै यस ठाउँमा नै अन्तर्धान हुनुभयो। भगवान् अन्तर्धान भएपछि देवताहरूले फूल तथा लाजाको वृष्टि गरे अनि आकाशमा गीत र तालको शब्दका साथै नगराहरू बज्न लागे। त्यसपछि प्रसन्न हुँदै शिवजीका गणहरू यहाँ आएर ऐश्वर्यका साथै सपरिवार राजा सूर्यकेतुलाई पुष्पक विमानमा राखेर शिवजीको लोकमा लगे ॥३०-३२॥

राजा सूर्यकेतुलाई विमानमा आसीन देखेर देवता, राक्षस तथा अरू प्राणीहरूले सहर्ष धन्यवाद दिए। जसले यस तीर्थमा स्नान गरेर यो पहाडमाथि चढ्छ, त्यस व्यक्तिले पाइलैपिच्छे अश्वमेध यज्ञ गरेको फल पाउँछ, यसमा शङ्का छैन। हे विरूपाक्ष ! जसले शतरुद्र लिङ्गको दर्शन गर्छ त्यो व्यक्ति सय जन्मसम्म गरेका सम्पूर्ण पापबाट मुक्त हुँदै शिवजीको गण बन्दछ। हे विरूपाक्ष ! वाग्वतीक्षेत्रमा उत्पन्न भएका अतिपवित्र पाँच तीर्थमा भक्तिपूर्वक विधिले स्नान गर्‍यो भने अन्य स्थानमा गरेको स्नान भन्दा करोडौँ गुणा बढी फल पाउँछ ॥३३-३६॥

हे विरूपाक्ष ! यहाँबाट आधा योजन पूर्व अर्थात् दुई कोस पूर्व काकेश्वर भगवान् हुनुहुन्छ। अब तिमी त्यहाँ जाऊ। हे विरूपाक्ष ! यो माहात्म्य प्राणीहरूको सुखका लागि बीजस्वरूप छ। मैले तिमीलाई शतरुद्रले मुक्ति दिनुभएको भगवान् शङ्करको यो माहात्म्य बताएँ ॥३७-३८॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा नारसिंहतीर्थ र शतरुद्रेश्वर शिवलिङ्गको महिमानामक
एकसय अठारौँ अध्याय पूरा भयो।

---

१३. कामम्, इति न.सं.पु.पाठः।
१४. समत्रैव, इति न.सं.पु.पाठः।
१५. अवदन्य, इति न.सं.पु.पाठः।
१६. यस्तत्तीर्थजलाप्लुत्य, इति न.सं.पु.पाठः।
१७. अन्यत, इति न.सं.पु.पाठः।
१८. पूर्वे दिशि ह्यतः, इति न.सं.पु.पाठः।
१९. माहात्म्यम्, इति न.सं.पु.पाठः।
२०. दत्तस्य मुक्तेः शतरुद्रनाम्न, इति न.सं.पु.पाठः।

# एकोनविंशाधिकशततमोऽध्यायः

आकाशगङ्गातीर्थ-काकेश्वरशिवलिङ्गयोर्महिमा ॥

स्कन्द उवाच

वाग्वतीप्रभवेऽगस्त्य ! सस्नौ भूयो विरूपदृक्। सुन्दर्याख्ये महातीर्थे ब्रह्मतीर्थे ततः पुनः ॥१॥
स्नात्वागमद्विरूपाक्षो यत्र काकेश्वरो विभुः। मुनिना तेन सार्द्धञ्च सर्वपापैः विवर्जितः ॥२॥
स्नात्वा चाऽऽकाशगङ्गायां काकेश्वरः समर्चितः। विधिवत्तेन पञ्चम्यां तपःकृष्णस्य कुम्भज ॥३॥
अध्युष्ट[१] तन्निशायां तल्लिङ्गमभ्यर्च्य कुम्भज। तन्माहात्म्यमपृच्छद्धि तत्तीर्थलिङ्गयोर्मुनिम् ॥४॥

विरूपाक्ष उवाच

नमस्ते नेमुने तुभ्यं संसारदुःखनाशिने। शतरुद्रस्य माहात्म्यं त्वत्प्रसादाच्छ्रुतं मया ॥५॥
भवतः श्रोतुकामोऽहं ब्रह्मविदांवर ! पुनः। एतल्लिङ्गस्य माहात्म्यं तीर्थस्य च तथा प्रभो ॥६॥
समुद्भूतं कथं[२] तीर्थमेतल्लिङ्गं तथा पुनः। को मुक्तोऽत्र महादेवाद्वद मे तन्मुनीश्वर ॥७॥

नेमुनिरुवाच

शृणु वत्स प्रवक्ष्यामि महाश्चर्यकथां शुभाम्। यस्याः श्रवणमात्रेण मुच्यते जन्मकिल्विषैः ॥८॥
एकदा दिवसे विप्र ! कैलाशे संस्थितो हरः[३]। कौतूहलेन पार्वत्या संवादं कृतवान् पुरा[४] ॥९॥

श्रीमहादेव उवाच

ममैव मायया सर्वञ्चराचरं विमोहितम्। जगद्धि जायते मत्तस्तत्सर्वं लीयते मयि ॥१०॥
मन्माययाऽऽशु देवि ! त्वं मोहिता सततं पुनः। मुह्यन्ते योगिनोऽप्याशु किमु चाऽन्यजना भुवि[५] ॥११॥
को वेत्ति मम कल्याणि ! चरित्रं तद् वदाधुना[६]। न जानन्ति चरित्रं मे ब्रह्मविष्णुपुरन्दराः ॥१२॥

---

अध्याय - ११९

आकाशगङ्गातीर्थ र काकेश्वर शिवलिङ्गको महिमा ॥

कुमार स्वामीले भन्नुभयो - हे अगस्त्य मुनि ! त्यसपछि विरूपाक्षले वाग्वतीको उत्पत्ति भएको सुन्दरी नामक महातीर्थ ब्रह्मतीर्थमा स्नान गरे। त्यसपछि त्यहाँ स्नान गरेर उनी सम्पूर्ण पापबाट मुक्त भई नेमुनिलाई साथमा लिएर जहाँ काकेश्वर भगवान् हुनुहुन्थ्यो, त्यस ठाउँमा गए। माघकृष्ण पञ्चमीका दिन उनले भक्तिपूर्वक आकाशगङ्गामा स्नान गरेर यथाविधि काकेश्वर भगवान्को अर्चना गरे। विरूपाक्षले त्यही रातमा लिङ्गको पूजा गरेर त्यस तीर्थ र लिङ्गको माहात्म्य नेमुनिसित सोधे ॥१-४॥

विरूपाक्षले भने - हे नेमुनि ! मेरा सम्पूर्ण दुःखलाई नाश गर्ने हजुरलाई नमस्कार छ। हजुरको कृपाबाट मैले शतरुद्रको माहात्म्य सुनें। हे ब्रह्मज्ञ प्रभु ! म पुनः हजुरबाट यो लिङ्ग र तीर्थको माहात्म्य सुन्न चाहन्छु। हे मुनीश्वर ! यो लिङ्ग र तीर्थको उत्पत्ति कसरी भएको थियो ? यस स्थानमा महादेवबाट वर पाएर को मुक्त भएको थियो ? मलाई बताउनुहोस् ॥५-७॥

नेमुनिले भन्नुभयो - हे बाबु ! एउटा अत्यन्त आश्चर्यलाग्दो कल्याणदायी कथा छ, त्यो कथा सुन्यो भने मात्रै पनि प्राणी सम्पूर्ण पापबाट मुक्त हुन्छ। एकदिन कैलाश पर्वतमा शिवजीको पार्वतीसँग ठट्टै ठट्टामा प्राचीन विषयमा संवाद भएको थियो ॥८-९॥

महादेवले भन्नुभयो - मेरै मायाले सम्पूर्ण चराचर जगत् मोहित भएका छन्, मबाटै संसारको प्रादुर्भाव हुन्छ र त्यो सबै ममा नै लीन हुन्छ। हे देवी ! बारम्बार तिमी मेरै मायाका कारण मोहित भएकी छौ। मेरो मायाबाट योगीहरू त तुरुन्त मोहित हुन्छन् भने अरूको के कुरा ? हे कल्याणी ! भन, मेरो चरित्र कसले जानेको छ ? ब्रह्मा, विष्णु र इन्द्र पनि मेरो चरित्र जान्दैनन् ॥१२॥

---

१. उषितः, इति न.सं.पु.पाठः।
२. कथं समुद्भवम्, इति न.सं.पु.पाठः।
३. चावदद्धरः, इति न.सं.पु.पाठः।
४. कौतूहलेन पार्वत्यै संवादं कारणं पुरा, इति न.सं.पु.पाठः।
५. चापि चान्यजनः किमु, इति न.सं.पु.पाठः।
६. तद्वदस्व मे, इति न.सं.पु.पाठः।

श्रीदेव्युवाच

मैवं वक्तव्यमार्येदं वचो मान्यजनेन वै। त्रैलोक्येशेन भूतेश ऋतमपि महाप्रभो ॥१३॥
को जानातीह भूतेश चरित्रं सर्वरूपगम्। वेत्स्यति च जनः कश्चित्तवैवानुग्रहाद्विभो ॥१४॥

नेमुनिरुवाच

एवं तयोर्विवादे हि निशामध्ये च शङ्करः। विहाय पार्वतीं शीघ्रं व्योम्नि तिरोदधे तदा ॥१५॥
वाग्वतीप्रभवात्पूर्वं तस्थौ गिरिगुहावरे। व्योमगङ्गां समावाह्य तन्निर्झरैः समाकुले ॥१६॥
त्रिपुरस्य भयात् त्रस्ताः कैलासमाययुः सुराः। व्रजामः शरणं रुद्रमिति कृत्वा च सत्त्वरम् ॥१७॥
न प्रेक्ष्य शङ्करं तत्र बभूवुः कम्पविग्रहाः। स्वर्गे रसातले भूमौ मृगयन्ति स्म तं द्रुतम् ॥१८॥
प्राप्तवन्तस्तदात्रैवाऽन्विष्यन्तो हरं सुराः[७]। त्रैलोक्ये च परिभ्रम्य द्वीपान् शैलान् सकन्दरान् ॥१९॥
ब्रह्मा दध्यौ शिवं सम्यक् क्षणं तदेह वै द्विज। व्याचष्ट वचनं तेभ्यो योगेनैव हि साम्प्रतम् ॥२०॥

ब्रह्मोवाच

भो देवा देवदेवेशो गूढरूपेण तिष्ठति। नहि सोऽन्यत्र चाऽत्रैव सत्यमेतन्न संशयः ॥२१॥
चरित्रं तस्य को वेद विना देवीं सुरोत्तमाः। अत्रैवाऽऽवाहयिष्यामस्तां देवीं भक्तिभिः स्तवैः ॥२२॥
एवञ्च कथ्यमाने हि देवास्तद्भयविह्वलाः। यूथीभूताः किलाऽत्रैव शृणु देव्याश्चरित्रकम् ॥२३॥
समाज्ञाय च तत्सर्वं चरित्रं शङ्करस्य च। देवानाञ्च मनः क्षुब्धं संस्मार मायया शिवाम् ॥२४॥
काकरूपेण चात्रैव तदा देवी समाययौ। सत्वरं व्योममार्गेण रुद्रचरित्रवित् सदा ॥२५॥
ध्यायमानं शिवं साक्षाद्देवी चाऽत्र ददर्श सा। एतद्गह्वरमासीनं गङ्गाधारासमाप्लुतम्[८] ॥२६॥
देवी कौतूहलेनैव सा काकरूपिणी तदा। व्याचष्ट काकवाक्येन तेभ्योऽत्रस्था विरूपदृक् ॥२७॥
काकविमोहिता देवाः कस्माद्वो भयमागतम्। क्लिश्यथ यं विना यूयं स हि चाऽत्रैव पश्यताम् ॥२८॥

---

पार्वतीले भन्नुभयो – हे पूजनीय ईश्वर ! हजुरजस्ता मान्यजनले सत्यै भए पनि यस्तो कुरा गर्नु उचित हुँदैन। हे ईश्वर ! सम्पूर्ण रूप लिने हजुरको चरित्र कसले जान्न सक्छ ? हे प्रभु ! यदि कसैले जान्दछ त त्यो पनि हजुरकै कृपाबाट मात्र जान्न सक्दछ ॥१३ –१४॥

नेमुनिले भन्नुभयो – मध्यरातमा उहाँहरूको वार्तालाप भइरहेको थियो। त्यसै समयमा पार्वतीलाई त्यहीँ छोडेर भगवान् शङ्कर आकाशमा अन्तर्धान हुनुभयो। त्यसपछि उहाँले आकाशगङ्गालाई वाग्वतीको शिरको पूर्वतिरको पर्वतको गुफामा बोलाउनुभयो। उहाँ आफू पनि आकाशगङ्गाको छहरा भएको ठाउँमा बस्नुभयो। देवताहरू त्रिपुरासुरको भयले गर्दा भगवान् शङ्करको शरणमा जाऔँ भन्ने निश्चय गरी तुरुन्त कैलाश पर्वतमा आए। कैलासमा भगवान् शङ्करलाई नदेखेर उनीहरूको शरीर काँप्यो। उनीहरूले छिट्ये छिट्ये स्वर्ग, पाताल र पृथ्वीमा भगवान्‌लाई शङ्करलाई खोजे। देवताहरू तीनै लोकमा रहेका सम्पूर्ण द्वीप, पर्वत र गुफाहरूमा भगवान् शङ्करलाई खोज्दै यसै ठाउँमा आइपुगे। हे विरूपाक्ष ! त्यही समयमा ब्रह्माजीले योगशक्तिद्वारा यसै ठाउँमा एकछिन शिवजीको ध्यान गर्नुभयो र देवताहरूलाई भन्न लाग्नुभयो ॥१५–२०॥

ब्रह्माजीले भन्नुभयो – हे देवता हो ! भगवान् शङ्कर लुकेर यसै ठाउँमा बस्नुभएको छ, अन्यत्र जानुभएको छैन। यो कुरा साँचो हो, यसमा सन्देह छैन। हे देवता हो ! भगवतीबाहेक अरु कसैले पनि उहाँको चरित्र जान्न सक्दैन। त्यसैले स्तुति गरेर ती भगवतीलाई आवाहन गरौँ। ब्रह्माजीले यति भनेपछि राक्षसको डरले विह्वल भएका देवताहरू जम्मा भएर यसै ठाउँमा बसे। त्यसपछि के भयो ? देवीको चरित्र सुन। यो सबै भगवान् शङ्करको चरित्र हो भन्ने कुरा सोचेर सबै देवताहरूको मन आत्तियो। उनीहरूले मायाले युक्त भएकी भगवतीको स्मरण गरे। भगवान् शङ्करको चरित्र जान्नुहुने भगवती कागको रूप लिएर त्यसैबेला आकाशमार्गबाट तुरुन्त यस ठाउँमा आउनुभयो ॥२१–२५॥

भगवती पार्वतीले गङ्गाको धारामा डुबेर यसै गुफामा ध्यान गर्दै बस्नुभएका साक्षात् भगवान् शङ्करलाई देख्नुभयो। हे विरूपाक्ष ! कागको रूप लिएकी भगवतीले उत्कण्ठापूर्वक कागकै बोलीमा देवताहरूलाई तिनीहरूको अवस्था बताउनुभयो ॥२६–२८॥

---

७. देवाश्चान्वेषयन् हरम्, इति न.सं.पु.पाठः।

८. गङ्गायानेन संवृतम्, इति न.सं.पु.पाठः।

विष्णुरुवाच

किं वदति च काकोऽसौ तत्रस्थो ह्यद्भुताननः। पश्याम्येतद्वचः सत्या काकवाणी न संशयः ॥२९॥
आरुह्यतां गिरिश्चैव भवद्भिर्मा चिरं सुराः। तद्वचोमङ्गलेनैव द्रक्ष्यामहे वयं हरम् ॥३०॥

नेमुनिरुवाच

काकवाणीं समाकर्ण्य विष्णोस्तथैव मङ्गलाम्। पुरो रुतं समागत्य तुष्टुवुर्भक्तिभिः सुराः ॥३१॥
भाद्रपदसिताष्टम्यां तन्मनस्काः समन्ततः। दध्युर्जेपुर्मुदा रुद्रं भक्तिभिर्देवता द्विज ॥३२॥
ददृशुर्देवताश्चाऽत्र ध्यायमानं परं शिवम्। तुष्टुवुस्तं प्रणम्याऽऽदौ परिक्रम्य मुहुर्मुहुः ॥३३॥
सम्प्रेक्ष्य देवता रुद्रो व्योम्नि द्रुतं तिरोदधे। लिङ्गमूर्तिं समास्थाय ज्ञात्वा तां[९] काकरूपिणीम् ॥३४॥
देवी चाऽपि तदा भूयस्तिरोधानं ययौ द्विज। देवाश्चाऽपूपुजन् लिङ्गं भक्त्या पञ्चोपचारकैः ॥३५॥
काकेनैव समुद्दिष्टञ्चैतल्लिङ्गं यतः सुरा। तस्मात्काकेश्वरो भूयादित्युक्त्वाऽपूपुजद्विधिः ॥३६॥
अप्राप्य शङ्करं साक्षात्मणिचूडगिरिं ययुः। भूयो द्विज सुराः सर्वे मृगयितुं तमाशु च ॥३७॥
एतल्लिङ्गे पुरा विप्र ! कश्चिन्मुक्तः पुनः शृणु। सदेहोऽभूदसौ म्लेच्छो रुद्रपार्श्वचरः सदा ॥३८॥
स्पृष्टान्नं भुक्तवान् मोहात्[१०] पूर्वजन्मन्यसौ नरः। तद्दोषेणाभवन्म्लेच्छः शुष्कोदरो विरूपदृक् ॥३९॥
मृगयाजीवनो भूयश्चैकदा दिवसे द्विज। धन्वी चाऽत्रागमन्म्लेच्छः कञ्चिद् विद्रावयन्[११] मृगम् ॥४०॥

---

विष्णुले भन्नुभयो– हे देवता हो ! कागको बोली सुनेर मोहित भएका तिमीहरूलाई के दुःख पऱ्यो ? जसलाई तिमीहरू खोज्दैछौ, उहाँ यसै ठाउँमा हुनुहुन्छ, हेर। विचित्र अनुहार भएको यो काग त्यहाँ बसेर के भन्दैछ ? एकपटक हेर्छु। कागको बोली सत्य हुन्छ, यसमा शङ्का छैन। अब यस पहाडमा चढिहालौं। त्यही कागको मङ्गलमय बोलीले गर्दा हामीले महादेवलाई भेट्न सक्छौं ॥२९-३०॥

नेमुनिले भन्नुभयो – कागको बोली र विष्णुको मङ्गलमय बोली सुनेर अगाडि सरेका देवताहरूले भक्तिपूर्वक भगवान् शङ्करको स्तुति गरे। हे विरूपाक्ष ! भाद्रशुक्ल अष्टमीका दिन शिवजीमा चारैतिरबाट मन लगाएर भक्तिपूर्वक देवताहरूले सहर्ष भगवान् रुद्रको मन्त्र जपे। देवताहरूले यसै ठाउँमा ध्यान गर्न लागेका भगवान् शिवजीलाई देखे। उनीहरूले पहिले नमस्कार गरे अनि बारम्बार परिक्रमा गरेर भगवान्को स्तुति गरे ॥३१-३३॥

भगवान् शङ्कर पनि देवताहरूलाई देख्नासाथ लिङ्गमूर्ति र कागको रूप लिने भगवतीलाई त्यहीं छोडी तत्काल आकाशमा अन्तर्धान हुनुभयो। हे विरूपाक्ष ! यो दृश्य देखेपछि कागको रूपमा रहेकी भगवतीले पनि शिवजी अन्तर्धान हुनभएको जानेर उहाँ पनि अन्तर्धान हुनुभयो। देवताहरूले पञ्चोपचार विधिले भक्तिपूर्वक यस लिङ्गको पूजा गरे। हे देवता हो ! कागले नै उत्पन्न गरेको हुनाले यस लिङ्गको नाम काकेश्वर रहनेछ भनेर ब्रह्माजीले पनि पूजा गर्नुभयो। भगवान् शङ्करलाई नभेटेर सारा देवताहरू उहाँलाई खोज्दै तुरुन्त मणिचूड पर्वततिर लागे ॥३४-३७॥

हे विरूपाक्ष ! यस लिङ्गको आराधना गरेर अघि कुनै म्लेच्छ मुक्त भएको थियो। त्यो सशरीर भगवान् शङ्करको पार्श्ववर्ती बन्न पुगेको छ, त्यो कुरा सुन। हे विरूपाक्ष ! अघि कुनै शुष्कोदर नामक मानिस थियो। उसले पूर्वजन्ममा अर्काले छोएको अन्न खाएको हुनाले त्यही दोषले गर्दा त्यो म्लेच्छ भएर जन्मियो। हे विरूपाक्ष ! धनुर्धारी त्यो मानिस शिकार खेलेर आफ्नो जीविका चलाउँथ्यो। कुनै दिन मृगलाई लखेट्दै त्यो म्लेच्छ यहाँ आइपुग्यो ॥३८-४०॥

---

९. एतत्ताम्, इति न.सं.पु.पाठः।
१०. भुक्तवानन्नम्, इति न.सं.पु.पाठः।
११. कश्चिद्विद्रुत्य वै, इति न.सं.पु.पाठः।

मृगोऽप्याशु तमालोक्य दुद्रावैतत्सुकन्दरात्। सोऽप्यभिद्रुत्य तञ्चाऽत्र प्राप्तवाँश्च तदा द्विज ॥४१॥
एतल्लिङ्गं तदालोक्य विस्मयं गतवान्[१२] हि सः। एवमेवं मुदा तस्थौ लोभमोहविवर्जितः ॥४२॥
नभसि व्योमगङ्गायां सस्नौ शुक्लाष्टमीतिथौ[१३]। अत्रैव च धनुस्त्यक्त्वा ज्ञानयुक्तो विरागवान् ॥४३॥
समर्च्य परया भक्त्या[१४] वन्योपहारकैस्ततः। प्रोषितवान्निशायां स लिङ्गमेतत् समस्पृशत्[१५] ॥४४॥
गणाश्चाऽत्र समागत्य व्योमगङ्गाजलैर्मुदा। अभिषेकं ददुस्तस्मै रुद्राज्ञया महोत्सवैः ॥४५॥
नवम्यां तं महायाने चास्थाय प्रमथा द्विज। निन्युः शिवपुरं सम्यक् लोकदर्शनपूर्वकम्[१६] ॥४६॥
सैव शुष्कोदरो नित्यं रुद्रपार्श्वचरोऽभवत्। रुद्रवरप्रयुक्तात्मा लिङ्गस्यास्य[१७] प्रसादतः ॥४७॥
समारोहणमात्रेण गिरेरस्य नरोत्तमः। अश्वमेधफलं प्राप्य बहुपापैर्विमुच्यते ॥४८॥
त्रिगङ्गानां समा ज्ञेया व्योमगङ्गा त्वियं द्विज। एतस्यां स्नानमात्रेण निष्पापः सान्वयः शुचिः ॥४९॥
विप्र ! व्रज ह्यतो दूरे क्रोशार्द्धे पूर्वतो दिशि। यत्राऽऽस्ते मणिचूडोऽसौ मणिचूडगिरौ सदा ॥५०॥
प्रोक्तं मया ते ह्यधुना महत्त्वं काकेश्वरस्याऽऽशु विरूपनेत्र।
दुष्प्रापमन्यैः खलु भक्तिहीनैर्लब्धो वरस्तेन[१८] कृशोदरेण ॥५१॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये
विरूपाक्षतीर्थयात्रायामाकाशगङ्गातीर्थकाकेश्वरयोर्माहात्म्यं नाम
कोनविंशाधिकशततमोऽध्यायः ॥११९॥

---

हे विरूपाक्ष ! आफूतिर आउन लागेको व्याधालाई देखेर मृग त्यही गुफाबाट उफ्रिएर भाग्यो। म्लेच्छ पनि त्यही गुफामा उफ्रिएर आइपुग्यो। त्यो म्लेच्छ यस लिङ्गलाई देखेर आश्चर्यचकित भयो। त्यसपछि लोभ, मोह सबै त्यागेर त्यो म्लेच्छ आनन्दित हुँदै यस ठाउँमा बस्यो। यस ठाउँमा नै उसले धनुष त्याग्यो र ज्ञानी तथा विरक्त भई श्रावणशुक्ल अष्टमीका दिन व्योमगङ्गामा स्नान गऱ्यो। उसले वनका फलफूलहरू ल्याएर भक्तिपूर्वक पार्वतीसहित यस लिङ्गलाई छोएर पूजा गऱ्यो र रातमा जाग्राम बस्यो ॥४१-४४॥

भगवान् शङ्करको आज्ञा अनुसार शिवजीका गणहरू प्रसन्न हुँदै यहाँ आई ठूलो उत्सव गरेर व्योमगङ्गाको जलले त्यसको अभिषेक गरे। प्रमथगणहरूले नवमीका दिन त्यस म्लेच्छलाई सम्पूर्ण प्राणीलाई देखाउँदै ठूलो यानमा राखेर शिवलोक लगे। रुद्रको वर र यसै लिङ्गको प्रभावले गर्दा त्यो शुष्कोदर अहिले भगवान् शङ्करको पार्श्ववर्ती भएर रहेको छ। यस पहाडमा चढ्नाले मात्रै पनि अश्वमेध यज्ञ गरेको फल प्राप्त हुन्छ र धेरै पापबाट मुक्ति पाइन्छ ॥४५-४८॥

हे विरूपाक्ष ! यी व्योमगङ्गा भनेकी त्रिगङ्गा अर्थात् गङ्गा, यमुना र सरस्वतीजस्तै हुन्। यिनमा स्नान गर्नाले मानिस कुलैसहित निष्पाप र पवित्र हुन्छ। हे विरूपाक्ष ! यहाँबाट आधा कोस पूर्वपट्टि मणिचूड पर्वतमा मणिचूड भगवान् रहनुभएको छ। अब त्यसै ठाउँमा जाऊ ॥४९-५०॥

हे विरूपाक्ष ! जुन ठाउँमा कृशोदर नाम गरेको म्लेच्छले वर पाएको थियो अनि भक्ति नभएका मानिसले जसलाई प्राप्त गर्न सक्दैनन्, त्यस्ता काकेश्वर भगवान्को माहात्म्य मैले तिमीलाई बताएँ ॥५१॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा आकाशगङ्गातीर्थ र काकेश्वरशिवलिङ्गको महिमानामक
एकसय उन्नाइसौं अध्याय पूरा भयो।

---

१२. चाश्चर्यं लब्धवान्, इति न.सं.पु.पाठः।
१३. सस्नौ च व्योमगङ्गायां शुक्लाष्टम्यां नभस्य च, इति न.सं.पु.पाठः।
१४. समर्चितो मया भक्त्या, इति न.सं.पु.पाठः।
१५. तदेतल्लिङ्गं समस्पृशत्, इति न.सं.पु.पाठः।
१६. सर्वलोकान् प्रदर्शयन्, इति न.सं.पु.पाठः।
१७. एतल्लिङ्गम्, इति न.सं.पु.पाठः।
१८. लब्धं वरं तेन, इति न.सं.पु.पाठः।

# विंशत्यधिकशततमोऽध्यायः

## मणिचूडमणिचूडेश्वरशिवलिङ्गयोर्महिमा

### स्कन्द उवाच

स स्नात्वाऽऽकाशगङ्गायां काकेश्वरप्रपूजकः। निष्पापोऽभूद्विरूपाक्षस्त्रिजन्मार्जितदुष्कृतैः ॥१॥
भूयोऽगमद्विरूपाक्षो मुनिना तेन वै सह। मणिचूडेश्वरो यत्र तमेवाराधितुं मुने ॥२॥
तद्ध्रदे स मुदा सस्नौ यथाविभवविस्तरैः। फाल्गुनकृष्णसप्तम्यां तल्लिङ्गं समपूपुजत्[१] ॥३॥
उषित्वा तन्निशायां स ह्यपृच्छन्नेमुनिं पुनः। माहात्म्यञ्चैव लिङ्गस्य तीर्थस्य च घटोद्भव ॥४॥

### विरूपाक्ष उवाच

नमस्ते नेमुने ! तात मम ज्ञानप्रकाशक। त्वत्तो हि श्रोतुकामोऽहं भूयो ब्रह्मविदाम्बर ॥५॥
समुद्भूतं कथं लिङ्गमेतद्ध्रदोत्तमान्तरे। को मुक्तोऽत्र वदैतन्मे लिङ्गस्यास्य प्रसादतः[२] ॥६॥

### नेमुनिरुवाच

स्थिते काकेश्वरे रुद्रे गङ्गापाते च निर्जने। काकरूपेण सा देवी दर्शयामास तं[३] सुरान् ॥७॥
तत्राऽऽगतान् सुरान् प्रेक्ष्य तस्मादत्राययौ शिवः। तत्रैवाऽस्थाय तल्लिङ्गं देवीं व्यमोहयत्तदा[४] ॥८॥
निर्मायैमं ह्रदं रुद्रस्तस्थौ मुदा ह्रदान्तरे। मणिचूडे जलासारसमाच्छादितविग्रहः ॥९॥
तस्मिन् काले सुरास्तत्र बभूवु[५]र्व्याकुला हृदा। ब्रह्मणो वचनाद् भूयो मणिचूडाचलं ययुः ॥१०॥
सम्भूय देवताः सर्वा ब्रह्मणा सह संस्थिताः[६]। वज्राख्याया महादेव्याः स्तवञ्चक्रुः पुनस्तदा ॥११॥

---

## अध्याय - १२०

### मणिचूड र मणिचूडेश्वर शिवलिङ्गको महिमा

कार्तिक स्वामीले भन्नुभयो - विरूपाक्षले आकाशगङ्गामा स्नान गरेर काकेश्वर महादेवको पूजा गरे। अनि उनी तीन जन्ममा गरेका कुकृत्यजन्य पापबाट मुक्त भए। त्यसपछि ती नेमुनिलाई साथमा लिई विरूपाक्ष भगवान् शङ्करको आराधनार्थ जहाँ मणिचूडेश्वर भगवान् रहनुहुन्थ्यो, त्यसै ठाउँमा गए। हे अगस्त्य मुनि ! फाल्गुन कृष्ण सप्तमीका दिन उनले त्यहाँ रहेको तलाउमा स्नान गरेर आफ्नो सामर्थ्य अनुसार मणिचूडेश्वर लिङ्गको पूजा गरे। हे अगस्त्य मुनि ! त्यसपछि विरूपाक्षले रातमा जाग्राम बसेर शिवलिङ्ग र तीर्थको माहात्म्य नेमुनिसित सोधे ॥१-४॥

विरूपाक्षले भने - मलाई ज्ञान दिने हे नेमुनि ! हजुरलाई नमस्कार छ। हे ब्रह्मज्ञ ! यस तलाउको बीचमा यस लिङ्गको उत्पत्ति कसरी भएको थियो ? यस लिङ्गको अनुग्रहबाट को मुक्त भएको थियो ? म सुन्न चाहन्छु, त्यो सबै मलाई बताउनुहोस् ॥५-६॥

नेमुनिले भन्नुभयो - जल नभएको एकान्तस्थलमा गङ्गाजी आएपछि कागको रूप लिएर यहाँ भगवान् शङ्कर बस्नुभयो। पार्वतीले पनि कागको रूप लिएर देवताहरूलाई भगवान् शङ्करको दर्शन गराउनुभयो। त्यहाँ आएका देवताहरूलाई देखेर शिवजी त्यहाँ आउनुभयो र त्यही ठाउँमा त्यस लिङ्गको स्थापना गरेर पार्वतीलाई मोहित तुल्याउनुभयो। भगवान् शिवजी मणिचूड पर्वतमा तलाउ बनाएर त्यसै तलाउको बीचमा आफ्नो शरीरलाई जलले छोपी आनन्दसँग बस्नुभयो। भगवान् शंकरलाई नदेखेर देवताहरू आत्तिए र ब्रह्माजीले भनेबमोजिम फेरि मणिचूड पर्वतमा गए। त्यसबेला ब्रह्माजीसहित सबै देवताहरूले मिलेर वज्रयोगिनी नाम गरेकी महादेवीको स्तुति गरे ॥७-११॥

---

१. कुम्भजार्चति, इति न.सं.पु.पाठः।
२. चैतल्लिङ्गप्रसादतः, इति न.सं.पु.पाठः।
३. रुद्रं प्रदर्शितम्, इति न.सं.पु.पाठः।
४. तां मोहयत्तदा, इति न.सं.पु.पाठः।
५. अभूवन्, इति न.सं.पु.पाठः।
६. तत्र वै समम्, इति न.सं.पु.पाठः।

देवा ऊचुः

ॐ नमो वज्रयोगिन्यै वज्राख्यायै नमो नमः। वज्रदेव्यै च वज्रायै महायोगिनि ! ते नमः ॥१२॥
आद्यायै च ह्यनाद्यायायादिदेवि नमोऽस्तु ते। देव्यै ह्यनादिरूपिण्यै चाऽऽदिशक्त्यै नमोऽस्तु ते ॥१३॥
योगिन्यै योगरूपायै योगिनीकोटिसेविते। महायोगधरायै ते योगेश्वर्यै नमो नमः ॥१४॥
घोरायै घोररूपिण्यै चाऽघोरायै नमो नमः। महाभीमस्वरूपिण्यै भीमरूपे ! नमोऽस्तु ते ॥१५॥
काल्यै चक्रत्रिनेत्रायै लोलजिह्वे नमोऽस्तु ते। ज्वलत्कालानलाभायै कालरात्रि ! नमोऽस्तु ते ॥१६॥
चतुर्दोर्भिः शुभाङ्गायै विविधायुधशोभने। महामाये नमो देव्यै चन्द्रार्द्धकृतशेखरे ॥१७॥
व्याघ्रचर्मोज्ज्वलद्दिव्यदेहायै च नमो नमः। भक्तानां वरदे मातर्महास्यायै नमो नमः ॥१८॥
रक्ष रक्ष महादेवि ! ते शरणागतांश्च नः। भयेभ्यस्त्राहि नो देवि रुद्रान्वेषणतत्परान् ॥१९॥
रुद्रं तं दर्शयाऽस्माकं वज्रेश्वरि च साम्प्रतम्। क्लिश्यामहे किलाऽद्यापि त्रिलोक्यां यं विना वयम्[७] ॥२०॥

नेमुनिरुवाच

तेषां भक्तिं समालोक्य योगैर्गम्या हि योगिनी। अदर्शयत्तनुं स्वाञ्च देवेभ्यो वज्रयोगिनी[८] ॥२१॥
इत्याकर्ण्य वचः स्तोत्रं देवैर्भक्त्या समीरितम्। देव्याह त्वरितं तेभ्यो हर्षसम्फुल्लमानसा ॥२२॥

योगिन्युवाच

अतश्चोर्ध्वं ह्रदे रम्ये तत्र तिष्ठति शङ्करः। त्रैलोक्यं मायया माञ्च सम्मोह्य खलु निर्जनः ॥२३॥
क्षेमङ्करी च मद्रूपा ह्रदे यत्र भ्रमिष्यति। तत्र द्रक्ष्यथ तां यूयं लिङ्गमूर्तिं जले स्थिताम् ॥२४॥

---

देवताहरूले भने – वज्रयोगिनीलाई नमस्कार छ, वज्रा नाम गरेकी देवीलाई नमस्कार छ, वज्रदेवी र वज्रा नाम भएकी हे महायोगिनी ! हजुरलाई बारम्बार नमस्कार छ। आद्या भएर पनि अनादि भएकी हे आदिदेवी ! हजुरलाई नमस्कार छ। आदिशक्ति भएर पनि अनादि रूप लिने हे देवी ! हजुरलाई नमस्कार छ। योगिनी, योगरूपा र करोडौं योगिनीद्वारा सुशोभित महायोग धारण गर्ने हे योगीश्वरी ! हजुरलाई नमस्कार छ। भयानक स्वरूप भए पनि घोर तथा अघोर दुबै रूप ग्रहण गर्ने अत्यन्त भीषण स्वरूप भएकी हे भीमरूपा ! हजुरलाई नमस्कार छ ॥१२-१५॥

चक्रजस्ता तीन आँखा र चञ्चल जिब्रो भएकी हे काली ! हजुरलाई नमस्कार छ। प्रलयकालको अग्निजस्तो कान्ति भएकी हे कालरात्रि! हजुरलाई नमस्कार छ। राम्रा अङ्गले सुहाएकी, चार हात भएकी, विभिन्न हतियारहरू धारण गर्ने हे महामाया ! आधा चन्द्र शिरमा धारण गर्ने हे देवी ! हजुरलाई नमस्कार छ। बाघको छाला लगाएकी र तेजिलो शरीर लिनुभएकी देवीलाई बारम्बार नमस्कार छ, ठूलो मुख भएकी भक्तलाई वर दिने हे आमा ! हजुरलाई बारम्बार नमस्कार छ। हे महादेवी ! हजुरको शरणमा आएका हामीहरूको रक्षा गर्नुहोस्, रक्षा गर्नुहोस्। भगवान् शिवजीको खोजीमा हिँडेका हामीहरूलाई भयबाट रक्षा गर्नुहोस्। हे वज्रेश्वरी ! भगवान् शङ्कर नभएर आजसम्म हामीले स्वर्गमा दुःख पाइरहेका छौ। त्यसैले हजुरले अहिले नै उहाँको दर्शन गराइदिनुहोस् ॥१६-२०॥

नेमुनिले भन्नुभयो – देवताहरूले भक्तिपूर्वक गरेको स्तुति र आफूप्रतिको भक्तिभाव देखेर योगसाधनाले मात्र जान्न सकिने योगिनी भगवतीले देवताहरूलाई आफ्नो स्वरूपको दर्शन दिएर प्रसन्न हुँदै भन्नुभयो ॥२१-२२॥

योगिनीले भन्नुभयो – यहाँदेखि अलिमाथि एउटा राम्रो तलाउ छ। तीनै लोक र मलाई समेत मायामा भुलाएर भगवान् शिव त्यस एकान्तस्थलमा बस्नुहुन्छ। मेरो क्षेमङ्करी नाम गरेको स्वरूप पनि त्यही तलाउमा घुमिरहेको छ। तपाईंहरूले त्यसै ठाउँमा जलभित्र लिङ्गमूर्ति भएका शिवजीलाई देख्नुहुनेछ ॥२३-२४॥

---

७. यं विना त्रिदिवे वयम्, इति न.सं.पु.पाठः।

८. योगिनी तदा, इति न.सं.पु.पाठः।

नेमुनिरुवाच

इत्याकर्ण्य वचो देव्या देवा प्रहर्षिता भृशम्। मेनिरे चाऽऽत्मभिः सत्यं कृतार्था इव साम्प्रतम् ॥२५॥
प्रणम्य तनुभिर्भूमौ तां देवीं त्रिविधात्मभिः। पर्यक्रमन्मुहुर्भक्त्या ब्रह्मादयो विरूपदृक् ॥२६॥
आज्ञां देहि च नो देवि ! व्रजामस्तत्र मा चिरम्। इति सम्प्रार्थ्य ते देवा मणिचूडं समाययुः[९] ॥२७॥
क्षेमङ्करीं ततो देवाः पक्षिश्रेष्ठां ह्रदोपरि। भ्रमन्तीं दृष्टवन्तस्ते[१०] चाऽत्रैव गमने तदा ॥२८॥
ततो देवाः प्रणेमुस्तां भ्रमन्तीं खे ह्रदोपरि। एतस्मिंस्ते ह्रदे भक्त्या स्नानञ्चक्रुर्निमज्य वै ॥२९॥
फाल्गुनकृष्णसप्तम्यां सङ्क्रमणे रवौ तथा। स्नात्वोत्तीर्य ह्रदात्तीरे तस्थुर्ध्यानयुताः सुराः ॥३०॥
ततो जेपुः किलाऽत्रैव तीरस्थास्त्रिदशा मनुम्। ह्रदं समन्ततो भक्त्या प्रणेमुश्चैव तुष्टुवुः ॥३१॥
व्यक्तो भव महादेव व्यक्तो भव प्रभोऽधुना। क्लिश्यामहे विना त्वाञ्च रक्षाऽस्मान् दैत्यकिल्विषात् ॥३२॥
इत्याकर्ण्य वचो रुद्रस्तेषां दुःखेरितं द्विज। वरदानाय देवेभ्यस्तुतोषाऽतिशयं विभुः ॥३३॥
ह्रदमध्यात्ततो रुद्र उत्ततार प्रहर्षयन्। पर्वणि पूर्णिमायाञ्च[११] पूर्णचन्द्र इवाऽर्णवे ॥३४॥
चतुर्बाहुस्त्रिनेत्रोऽज ईषत्प्रहसिताननः। व्याजहार शुभं वाक्यं देवेभ्यो वरकारणम् ॥३५॥

श्रीमणिचूडेश्वर उवाच

त्रासं कुरुत मा देवा[१२] मुञ्चत शत्रुतो भयम्। प्राप्य मद्दर्शनं चित्ते युष्माकं स्यात् कथं भयम्[१३] ॥३६॥
गमिष्याम्यधुना स्वर्गं भवद्भिः सह पद्मज। प्रतीकारं करिष्यामि शृणुध्वं मद्वचो हि ते ॥३७॥
यश्चाऽऽरोहति मच्छैलं मणिचूडाद्रिनामकम्। यन्नाम वै धिया स्मृत्वा मल्लोकं स गमिष्यति ॥३८॥
मन्मणिचूडसम्भूतां नदीनां प्रवरां विदुः। पानावगाहनात्तस्यां वाजपेयफलं भवेत् ॥३९॥

---

नेमुनिले भन्नुभयो – देवीको यो कुरा सुनेर देवताहरू अत्यन्त प्रसन्न भए। त्यतिबेला उनीहरूले आफूलाई साँच्चै कृतार्थ भएको ठाने। हे विरूपाक्ष ! ब्रह्माजी आदि देवताहरूले भूमिमा शरीर झुकाएर तीनै किसिमको भक्तिद्वारा ती देवीलाई प्रणाम गरे र बारम्बार उहँको परिक्रमा पनि गरे। हे देवी ! हामीलाई आज्ञा दिनुहोस्, हामी तुरुन्त त्यहाँ जान्छौ। यसरी देवीसित आज्ञा लिएर देवताहरू तत्काल मणिचूड पर्वतमा आए। यहाँ आएपछि देवताहरूले तलाउभन्दा माथिबाट आकाशमा घुमिरहेको पक्षीको रूप लिएकी क्षेमङ्करी योगिनीलाई देखे ॥२५–२८॥

देवताहरूले तलाउमाथिको आकाशमा घुमिरहेको त्यस पक्षीलाई नमस्कार गरे र यस तलाउमा डुबेर भक्तिपूर्वक स्नान पनि गरे। फाल्गुनकृष्ण सप्तमी र सङ्क्रान्ति परेको त्यस दिन देवताहरू यही तलाउमा स्नान गरेर ध्यान गर्न लागे। त्यसपछि यसै तलाउको तीरमा बसेर देवताहरूले भगवान् शङ्करको मन्त्र जपे। उनीहरूले तलाउ वरिपरि घुमेर भक्तिपूर्वक भगवान्लाई प्रणाम गर्दै स्तुति गरे ॥२९–३१॥

हे महादेव ! प्रकट हुनुहोस्। हे प्रभु ! अब प्रकट हुनुहोस्। हजुर नभएको हुनाले हामीले दुःख पाएका छौं। दैत्यहरूको अत्याचारबाट हाम्रो रक्षा गर्नुहोस्। हे विरूपाक्ष ! देवताहरूको यस्तो भनाइ सुनेर भगवान् शङ्कर अत्यन्त सन्तुष्ट हुनुभयो र उनीहरूलाई वर दिन तत्पर हुनुभयो। त्यसपछि पूर्णिमा तिथिमा समुद्रमा पूर्णचन्द्र देखिएझैं खुसी हुँदै तलाउको मध्य भागबाट भगवान् शङ्कर प्रकट हुनुभयो। मुसुक्क हाँस्नुभएका भगवान् शिवका चार हात र तीन आँखा थिए। यस्ता अजन्मा भगवान् शङ्करले देवताहरूलाई वर दिनका लागि भन्नुभयो ॥३२–३५॥

मणिचूडेश्वरले भन्नुभयो – हे देवता हो ! नडराओ, शत्रुदेखि हुने डर त्याग। मेरो दर्शन पाएपछि तिमीहरूको अगाडि डर कसरी आउँछ र ? अर्थात् तिमीहरू डराउनुपर्दैन। हे ब्रह्मा ! म अहिले तिमीहरूसँगै स्वर्ग जान्छु र तिनीहरूको प्रतीकार गर्छु। मेरो कुरा सुन। जसले मणिचूड नाम गरेको पहाडमा आरोहण गर्दछ र मेरो नाम स्मरण गर्दछ, त्यो व्यक्ति मेरो लोकमा जान्छ। मेरो मणिचूड पर्वतबाट निस्किएकी नदीलाई उत्तम नदी ठान्दछन्। यस नदीको जलपान गर्ने र यसमा स्नान गर्ने व्यक्तिले वाजपेय यज्ञ गरेको फल पाउँछ ॥३६–३९॥

---

९. इत्याज्ञां याच्यतां देवाः अत्राययुर्हि सत्वरम्, इति न.सं.पु.पाठः।
१०. ददृशुर्भ्रममाणां वै, इति न.सं.पु.पाठः।
११. महापर्व, इति न.सं.पु.पाठः।
१२. भो देवास्त्रासयध्वं मा, इति न.सं.पु.पाठः।
१३. मद्दर्शनं समालभ्य क्वागमिष्यति वो भयम्, इति न.सं.पु.पाठः।

ममैतस्मिन् ह्रदे यो हि पर्वणि स्नाति श्रद्धया[१४] । सर्वैनोभिर्विनिर्मुक्तो मल्लोकमाप्स्यति ध्रुवम् ॥४०॥
यो मां पश्यति चैतस्मिन् लिङ्गमूर्तिं ह्रदेऽमराः । इह लोकं परित्यज्य स्थास्यति सुचिरं मयि ॥४१॥
यः पश्यति च वज्राख्यामादिशक्तिञ्च मत्प्रियाम् । आरुह्य तद्गिरिं भक्त्या तस्य पुण्यफलं शृणु ॥४२॥
सर्वजन्मार्जितैः पापैर्मुच्यते तत्क्षणाद्धि सः । वरयोगैः प्रलभ्यं यत्तन्मोक्षं लभते क्षणात् ॥४३॥
तत्र यत्तत्करिष्यन्ति दानयोगार्चनं सुराः । तत्सर्वमक्षयं विन्द्याद्योनौ न जायते पुनः ॥४४॥

नेमुनिरुवाच

इत्युपदिश्य देवान् स ययौ स्वर्गञ्च तैः सह[१५] । एकांशं हि समास्थाय चैतद्धि लोकहेतवे ॥४५॥
माहात्म्यं[१६] कथितं विप्र ! मणिचूडेश्वरस्य ते । कश्चिन्मुक्तो हि भूयोऽत्र कालान्ते शृणु मानुषः ॥४६॥
पूर्वजन्मनि मर्त्योऽसौ स्वर्णस्तेयं चकार हि[१७] । तद्दोषेण कृशाङ्गोऽभूत् किरातो म्लानविग्रहः ॥४७॥
पूर्णिमायामसौ म्लेच्छश्चाऽत्राऽऽययौ यदृच्छया । अत्रैव स्नातकान् प्रेक्षन् मृगयायां वने चरन् ॥४८॥
जलक्रीडाक्षणे दोर्भ्यां स लिङ्गमस्पृशज्जनः[१८] । एतज्जलं पपौ पूर्णं शिवेति च वदन् स्थितः ॥४९॥
तन्निशायां मृतो म्लेच्छः काले प्राप्ते च तत्र सः । तत्प्रेक्ष्य मुनयश्चित्रं साधु साध्विति चाऽवदन् ॥५०॥
ततो रुद्रगणा याने तमास्थाय महोत्सवैः । निन्युः शिवपुरं व्योम्नो दर्शयन्तो मुनीनपि[१९] ॥५१॥
सोऽभूद्रुद्रगणश्रेष्ठः कृशाङ्गो नाम विश्रुतः । अत्र प्राणविसर्गाद्धि चैतल्लिङ्गस्य स्पर्शनात्[२०] ॥५२॥
भूयो ह्यतो गच्छ विरूपनेत्र ! यत्र स्थितार्या खलु योगिनी सा ।
तस्मादधः सानुवरे च सिद्धिं प्राप्नोषि तस्या हि न संशयस्त्वम् ॥५३॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां मणिचूडेश्वरमाहात्म्यं नाम विंशत्यधिकशततमोऽध्यायः ॥१२०॥

---

जसले पर्वमा मेरो यस तलाउमा स्नान गर्छ त्यो व्यक्ति सम्पूर्ण पापबाट मुक्त भएर अवश्य मेरो लोकमा पुग्दछ। हे देवता हो ! यस तलाउमा जसले मेरो लिङ्गमूर्तिको दर्शन गर्छ त्यो व्यक्ति यो संसार छोडेपछि धेरै समयसम्म मसितै बस्न पाउँछ। जसले यस पहाडमा चढेर मेरी प्रिया वज्रा नामकी आदिशक्तिको भक्तिपूर्वक दर्शन गर्छ त्यसको पुण्यफल सुन। त्यो व्यक्ति सबै जन्ममा गरेका पापबाट तत्काल मुक्त हुन्छ र त्यसले ठूलो योगबाट मात्र प्राप्त गर्न सकिने मोक्षलाई तुरुन्त प्राप्त गर्दछ। हे देवता हो ! जसले त्यहाँ दान, योग र पूजा गर्छन्, ती सबै अक्षय हुन्छन् भनेर जान। त्यस्तो गर्ने व्यक्तिले फेरि योनिमा जन्म लिनुपर्दैन ॥४०-४४॥

नेमुनिले भन्नुभयो - यसरी भगवान् शङ्कर तिनीहरूलाई उपदेश दिएर लोककल्याणका लागि एक अंश यहीं छोडी देवताहरूको साथमा स्वर्ग जानुभयो। हे विरूपाक्ष ! मैले तिमीलाई यो मणिचूडको माहात्म्य बताएँ। यसै ठाउँमा कुनै कालखण्डमा मानव मुक्त भएको विषयमा सुन। पूर्वजन्ममा सुन चोरेको दोषले गर्दा कुनै मानिस यस जन्ममा मलिनो शरीर भएको दुब्लो किरात भएर जन्मियो। पूर्णिमाको दिन शिकार खेल्दै त्यो किराति आफूखुसी यहाँ आयो र वनमा विचरण गर्दै यहाँ स्नान गर्न लागेका मानिसहरूलाई देख्यो। त्यसले पौडी खेल्दा हातले शिवलिङ्गको स्पर्श गर्‍यो, पेटभरि पानी खायो र अनि शिव शिव भनेर बस्यो ॥४५-४९॥

त्यसै रात मृत्युको समय आइसकेको हुँदा सोही ठाउँमा त्यो म्लेच्छ मर्‍यो। त्यो देखेर ऋषिहरूले साधु साधु भन्दै त्यसलाई स्यावासी दिए। त्यसपछि शिवजीका गणहरू आएर ठूलो उत्सवका साथ त्यसलाई यानमा राखे। मुनिहरूलाई देखाउँदै आकाशमार्गद्वारा उनीहरूले त्यसलाई शिवलोक लगे। हे विरूपाक्ष ! कृशाङ्ग नाम गरेको त्यो व्यक्ति यस ठाउँमा मरेको र भगवान् शिवजीको लिङ्गलाई स्पर्श गरेको कारण गणहरूको नेता भयो ॥५०-५२॥

हे विरूपाक्ष ! अब फेरि तिमी यहाँबाट जहाँ पूजनीय योगिनी रहनुभएको छ, त्यस ठाउँमा जाऊ। त्यसबाट तलतिर पहाडको शिखरमा तिमी भगवती योगिनीको आराधना गर, सिद्धि पाउनेछौ, यसमा शङ्का छैन ॥५३॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा मणिचूडेश्वरमाहात्म्यनामक
एकसय बीसौं अध्याय पूरा भयो।

---

१४. स्नायते पुनः, इति न.सं.पु.पाठः।
१५. इत्युपदिश्य तेभ्यः स ययौ स्वर्गं सुरैः समम्, इति न.सं.पु.पाठः।
१६. इत्येतत्, इति न.सं.पु.पाठः।
१७. कृतोऽन्यतः, इति न.सं.पु.पाठः।
१८. जलक्रीडाकृते दोर्भ्यामेतल्लिङ्गं स्पृशद्धि सः, इति न.सं.पु.पाठः।
१९. मुनिगणान् प्रदर्शयन्, इति न.सं.पु.पाठः।
२०. एतल्लिङ्गस्पृशाद् द्विज, इति न.सं.पु.पाठः।

# एकविंशत्यधिकशततमोऽध्यायः

## योगगङ्गायोगिनीयोगेश्वरीणां महिमा

स्कन्द उवाच

सम्पूज्य विधिवल्लिङ्गं स्नात्वा मणिह्रदे द्विज। अगमन्मुनिना सार्द्धं सा स्थिता यत्र योगिनी ॥१॥
योगगङ्गाजले स्नात्वा चाऽपूपुजत्स तां शिवाम्। फाल्गुनस्यासिताष्टम्यां विरूपाक्षो महानिशि ॥२॥
माहेश्वरीञ्च सम्पूज्य[1] चैकमूर्तिं हरात्मिकाम्। लक्षं प्रजप्तवान् मन्त्रमपृच्छत्तं प्रशंसनम् ॥३॥

विरूपाक्ष उवाच

नमस्ते नेमुने ! तुभ्यं प्रष्टुकामोऽस्मि त्वत्[2] प्रभो। कथं तिष्ठत्यसौ देवी कस्मादागत्य चात्र वै ॥४॥
एतस्याश्चैव माहात्म्यं श्रोतुमिच्छाम्यहं पुनः। केन लब्धो वरो ह्यस्या वदैतन्मे मुनीश्वर ॥५॥

नेमुनिरुवाच

या पुरा संस्तुता देवी ब्रह्मणा सैव विश्रुता। विष्णुनेत्रस्थिता माया ज्ञेया निद्रास्वरूपिणी ॥६॥
ब्रह्मणा निर्मिते शैले तस्थौ सम्प्राप्य योगिनी[3]। प्रेक्ष्य मणिमयञ्चैनं योगेनैव रहः पुरा ॥७॥
किञ्चित्कालान्तरे देवैर्योगैरियं प्रसेविता। ब्रह्मविष्णुहराद्यैर्वा तस्माद्योगेश्वरी श्रुता ॥८॥
गुहास्वेतासु संस्थाय सप्तर्षयः प्रतेपिरे। सहस्रवत्सरं दिव्यं जपन्तस्तन्मनुं भृशम् ॥९॥
शिवशक्त्यात्मिकां देवीं शिवविधिसुपूजिताम्[4]। तेऽभवन् सप्त ब्रह्माणः सम्पूज्य लेभिरे वरान्[5] ॥१०॥
तामाराधय भूयस्त्वं ततः सिद्धो भविष्यसि। नानोपहारकैस्तोत्रैस्तन्मनस्कश्च भक्तिभिः ॥११॥

---

## अध्याय – १२१

### योगगङ्गा, योगिनी र योगेश्वरीको महिमा

कुमार स्वामीले भन्नुभयो – त्यसपछि विरूपाक्ष मणिचूडको तलाउमा स्नान गरी विधिपूर्वक लिङ्गको पूजा गरेर जहाँ भगवती योगिनी बस्नुभएको थियो, त्यसै ठाउँमा नेमुनिलाई साथमा लिएर गए। विरूपाक्षले फाल्गुनकृष्ण अष्टमीको रातमा योगगङ्गाको जलमा स्नान गरेर भगवतीको पूजा गरे। उनले शिवजीकी मूर्ति मानिएकी भगवती माहेश्वरीको पूजा गरेर एक लाख मन्त्र जपे र योगिनीको माहात्म्य नेमुनिसित सोधे ॥१–३॥

विरूपाक्षले भने – हे नेमुनि ! हजुरलाई नमस्कार छ। यी भगवती कहाँबाट आएर कसरी यहाँ बसेकी हुन् ? यिनको माहात्म्य के छ ? म फेरि सुन्न चाहन्छु। हे मुनीश्वर ! यिनबाट कसले वर पायो, मलाई बताउनुहोस् ॥४ –५॥

नेमुनिले भन्नुभयो– यी देवी तिनै हुनुहुन्छ जसको ब्रह्माजीले अघि स्तुति गर्नुभएको थियो। यी देवी विष्णुको आँखामा बस्ने निद्रास्वरुपिणी माया हुनुहुन्छ भनेर जान। अघि ब्रह्माजीले निर्माण गर्नुभएको पर्वतलाई मणिमय देखेर भगवती योगसाधनाका लागि यहाँ आई एकान्तमा बस्नुभएको थियो ॥६–७॥

केही समयपछि ब्रह्मा, विष्णु, शिव आदि देवताहरूले योगसाधना गरेर उहाँको सेवा गरे। त्यसैले उहाँको नाम योगेश्वरी भनी प्रसिद्ध भयो। यिनै गुफाहरूमा बसेर सप्तर्षिहरूले दिव्य हजार वर्षसम्म खूबसित भगवतीको मन्त्र जप्दै तपस्या गरे। शिवशक्तिस्वरूप भएकी र आफैँ उत्पन्न भई शिवजीका साथमा रहेकी भगवती देवीको पूजा गरेर सप्तर्षिहरूले सप्तब्रह्मा हुने वर पाएका थिए। त्यसैले तिमी पनि विभिन्न किसिमका सामग्री र स्तोत्रहरूले भक्तिपूर्वक उहाँको आराधना गर, सिद्ध हुनेछौ ॥८–११॥

---

१. उमां माहेश्वरीं पूज्य, इति न.सं.पु.पाठः।
२. प्रष्टुकामस्त्वयि, इति न.सं.पु.पाठः।
३. तस्थौ तत्र समाव्रजन्, इति न.सं.पु.पाठः।
४. देवीं स्वयम्भुवां शिवेन च, इति न.सं.पु.पाठः।
५. सप्तब्रह्मा भवन् ते वै संपूज्य चालचन्वरान्, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

आदाय तद्वचः पथ्यं हर्षप्रफुल्ललोचनः। सम्पूज्य विधिवद्देवीं जजाप च हरात्मिकाम् ॥१२॥
तुष्टाव च मुहुर्भक्त्या त्रिविधया घटोद्भव। इमां विप्रो निशामध्ये शिवां[६] माहेश्वरीतिथौ ॥१३॥
शिवशक्त्यात्मिकां देवीमुमां योगेश्वरीं तदा। परिक्रम्य मुहुर्विप्रो ननाम दण्डवत्क्षितौ ॥१४॥

विरूपाक्ष उवाच

अनाद्यायै किलाद्यायै शिवायै सततं नमः। शिवशक्त्यात्मरूपिण्यै चाऽऽदिशक्त्यै नमो नमः ॥१५॥
विशालाक्ष्यै महादेव्यै लम्बोदरि ! नमोऽस्तु ते। सर्वप्रणतपादायै सर्ववरप्रदे नमः ॥१६॥
अम्बिकायै महोत्साहे महोग्रायै नमोऽस्तु ते। महामङ्गलरूपिण्यै महाप्रभे नमोऽस्तु ते ॥१७॥
योगिन्यै योगरूपिण्यै योगेश्वर्य्यै नमोः नमः। महायोगैः प्रलक्ष्यायै योगिनां योगदे नमः ॥१८॥
ब्रह्मविष्णुहरेन्द्रैश्च सेवितपादपुष्करे। त्रैलोक्यवन्दिते देवि ! वरप्रदे नमोऽस्तु ते ॥१९॥
ब्रह्मत्वं ब्रह्मणे दत्तं व्यापित्वं विष्णवे तथा। ईश्वर्य्यत्वं हरायाऽऽर्य्ये दत्तं देवि ! नमोऽस्तु ते ॥२०॥
देवराजत्वमिन्द्राय स्वर्गराज्यप्रदे नमः। भक्तेभ्यश्चेप्सितं दत्से नमो मातर्नमोऽस्तु ते ॥२१॥
ब्रह्माण्डभाण्डरूपेण सर्वजगत्करेऽनिशम्। सर्वान्तःस्थायिनि मातः सर्वेन्द्रियात्मभिर्नमः ॥२२॥
मनोबुद्धिचिदानन्दैर्लोकान् निर्मासि स्वेच्छया[७]। लोभमोहमदाश्चर्य्यकामक्रोधैश्च त्वं स्वयम्[८] ॥२३॥
कङ्कालकालरूपेण लोकान् कलयसि ध्रुवम्। निःशेषञ्वेह कामेशि कामेश्वरि नमोऽस्तु ते ॥२४॥
चतुःषष्टिकलाभिस्त्वं माता मे लभसे[९] हरम्। बहुरूपप्रधारिण्यै जगदम्बे नमोस्तु ते ॥२५॥

---

विरूपाक्षले नेमुनिको उपकारी वचन ग्रहण गरे र अत्यन्त हर्षित भए। त्यसपछि उनले हर्षले प्रफुल्लित हुँदै माहेश्वरी भगवतीको विधिपूर्वक पूजा गरी जप गरे। हे अगस्त्य मुनि ! ती विरूपाक्षले भगवतीको प्रियतिथिको दिन मध्यरातमा तीनै किसिमका भक्तिद्वारा बारम्बार उहाँको स्तुति गरे। विरूपाक्षले त्यतिबेला शिवशक्तिस्वरूप भएकी योगेश्वरी देवीको परिक्रमा गरेर पृथ्वीलाई बारम्बार दण्डवत् प्रणाम गरे ॥१२-१४॥

विरूपाक्षले भने – अनादिस्वरूप भएकी आदिरूपा पार्वतीलाई बारम्बार नमस्कार छ। शिवशक्तिस्वरूप भएकी आदिरूपा आदिशक्तिलाई बारम्बार नमस्कार छ। हे लम्बोदरी ! विशाल आँखा भएकी महादेवी हजुरलाई नमस्कार छ। सबैद्वारा पाउमा वन्दना गरिएकी, सम्पूर्ण वर दिने देवीलाई नमस्कार छ। अत्यन्त उत्साह राख्ने हे देवी ! अम्बिकाको रूपमा रहेकी हजुरलाई नमस्कार छ। अत्यन्त उग्र स्वभावकी हजुरलाई नमस्कार छ। महामङ्गलको रूप लिने विशाल तेज भएकी हजुरलाई नमस्कार छ। योगको रूप लिने योगिनी योगेश्वरीलाई बारम्बार नमस्कार छ। महायोगद्वारा मात्र साक्षात्कार गर्न सकिने र योगीलाई योग सिकाउने देवीलाई नमस्कार छ। जसको चरणकमललाई ब्रह्मा, विष्णु, शिव र इन्द्रले नित्य सेवा गरेका छन्, तीनै लोककी वन्दनीया वरदाता हे देवी ! हजुरलाई नमस्कार छ ॥१५-१९॥

हे देवी ! हजुरले ब्रह्मालाई ब्रह्मत्वको वरदान दिनुभयो, विष्णुलाई व्यापक हुने वर दिनुभयो र शिवजीलाई ऐश्वर्य प्रदान गर्नुभयो। यस्ती हजुरलाई नमस्कार छ। हे माता ! इन्द्रलाई देवराज बनाएर स्वर्गको राज्य दिने हजुरलाई नमस्कार छ, नम्र भक्तजनहरूलाई इच्छा लागेको वर दिनुहुने हजुरलाई नमस्कार छ। ब्रह्माण्डरूपी भाण्डमा लीला गर्नुहुने र संसारमा सधैँ अनेक लीला गर्ने हजुरलाई नमस्कार छ। सम्पूर्ण इन्द्रिय र आत्माद्वारा सबै प्राणीहरूमा वास गर्ने हे माता ! हजुरलाई नमस्कार छ। मन, बुद्धि र चिदानन्दले लोकको सृष्टि गर्ने तथा लोभ, मोह, मद, आश्चर्य, काम, क्रोधआदि सबैलाई साथमा राख्ने हजुरलाई नमस्कार छ। हेर्न नसकिने कालरुपिणी भएर पनि लोकलाई एकत्रित पार्नुहुने हे कामेश्वरी ! हजुरलाई नमस्कार छ। चौसट्ठी कलाले युक्त भएकी हे भगवती ! हजुर भगवान् शङ्करलाई राम्रोसित जान्नुहुन्छ। अनेक रूप धारण गर्नुहुने हे जगदम्बे ! हजुरलाई नमस्कार छ ॥२०-२५॥

---

६. उमा, इति न.सं.पु.पाठः।
७. त्वया लोकान् विकृन्तते, इति न.सं.पु.पाठः।
८. नमोऽस्तु ते, इति न.सं.पु.पाठः।
९. विन्दते, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

एतत्सर्वं समाकर्ण्य योगेश्वरी घटोद्भव। हर्षप्रफुल्लनेत्राऽसौ वरं दातुमुवाच हि ॥२६॥

योगिन्युवाच

साधु वत्स विरूपाक्ष स्तवेनाहं प्रतोषिता। भक्तिभिश्च त्रिधा मन्त्रैः[10] स्तवार्चनैस्तथा भृशम् ॥२७॥
अद्यादि त्वं चिरञ्जीव्या भक्त्या मम प्रतोषणात्। देहेनानेन पुत्रार्य ! सिद्धो भव निरन्तरम् ॥२८॥
तीर्थाटनं पुनः कर्तुं गच्छाधुना विरूपदृक्। सन्निधाने च मे कृत्वा तपः स्थास्यसि पुत्रक[11] ॥२९॥
व्याजहार वचो भूयो विरूपाक्षञ्च[12] नेमुनिः। मुक्तः कश्चित्पुरा मर्त्यश्चाऽत्र देव्याः प्रसादतः ॥३०॥

नेमुनिरुवाच

शृणु विप्र प्रवक्ष्यामि मुक्तः कश्चिन्नरोत्तमः। पूर्वजन्मकृतात्पुण्यादेतस्य हि प्रसादतः ॥३१॥
आसीत्पुरा नृपश्रेष्ठो देवीदास इति श्रुतः। कलिङ्गाधिपतिर्विप्र ! दानधर्मरतः शुचिः ॥३२॥
नारदस्य मुखाच्छ्रुत्वा चाऽस्या देव्याः प्रशंसनम्। राज्यं न्यस्याऽऽत्मजे तस्माद्विरक्तो निर्ययौ पुरात् ॥३३॥
उत्तीर्य पर्वतान् देशानत्रैव प्राप्तवान्नृपः। योगेश्वर्यै नमस्तस्यै चेत्युक्त्या च पदे पदे ॥३४॥
तदाज्ञाञ्च समादाय मुदात्र प्रययौ नृपः। पठन् मनुं धिया भक्त्या त्यक्तसंसारसङ्गरः ॥३६॥
एतस्यां योगगङ्गायां सस्नौ च विधिवन्नृपः। गणेश्वरं नमस्कृत्य निष्पापो ज्ञानवानभूत् ॥३५॥
ददर्श सह रुद्रेण योगेश्वरीं स्वयम्भुवाम्। उमामाहेश्वरीं देवीं चित्ररूपां भयङ्करीम् ॥३७॥
ईषे कृष्णनवम्याञ्च नृपोऽसौ विविधार्हणैः। अपूपुजदिमां देवीं भक्तियुक्तो महानिशि ॥३८॥
प्रणम्य दण्डवद्भूमौ परिक्रमन् स्तुवन्मुहुः। ततो जजाप तन्मन्त्रं लक्षमेकं हि भक्तितः ॥३९॥
सूर्यप्रभे महायाने तमास्थाय गणास्ततः। उमामाहेश्वरं लोकं निन्युर्मानपुरःसरम् ॥४०॥

---

कार्तिक स्वामीले भन्नुभयो – विरूपाक्षको यस्तो स्तुति सुनेर प्रसन्न हुँदै योगेश्वरी भगवतीले वर दिनका लागि उनलाई भन्नुभयो ॥२६॥

योगिनीले भन्नुभयो – हे बाबु विरूपाक्ष! तिम्रो यो स्तुति सुनेर, तीन किसिमको भक्ति, मन्त्र तथा तिमीले गरेको अर्चना देखेर म अत्यन्त प्रसन्न भएँ, धन्यवाद छ। भक्तिले मलाई सन्तुष्ट पारेको हुँदा तिमी यही शरीर लिएर आजदेखि धेरै कालसम्म बाँच। हे बाबु ! तिमी बारम्बार सिद्ध बन। हे विरूपाक्ष ! अब तिमी तीर्थयात्राका लागि यहाँबाट जाऊ। हे छोरा ! मेरो नजिकै बसेर पूजक अर्थात् भक्त बनी तपस्या गर्न पाउनेछौ। नेमुनिले विरूपाक्षलाई फेरि बताउनुभयो – अघि कुनै मानिस देवीका कृपाले यस ठाउँमा मुक्त भएको थियो ॥२७-३०॥

नेमुनिले भन्नुभयो – हे विरूपाक्ष ! कुनै मानिस यहाँ पूर्वजन्ममा गरेको पुण्य र यस क्षेत्रको अनुग्रहले गर्दा मुक्त भएको थियो। म बताउँछु, सुन। हे विरूपाक्ष ! अघि देवीदास नाम गरेका कुनै व्यक्ति कलिङ्ग देशको राजा थिए। उनी सबै राजामा श्रेष्ठ, दानी, धर्मात्मा र पवित्र थिए। नारदको मुखबाट यी देवीको माहात्म्य सुनेर विरक्त भई आफ्नो राज्य छोरालाई सुम्पिएर उनी त्यस शहरबाट निस्किए। उनी विभिन्न पर्वत र देशहरू नाघेर पाइलैपिच्छे ती योगेश्वरीलाई नमस्कार छ भन्दै यसै ठाउँमा आइपुगे ॥३१-३४॥

ती राजाले यही योगगङ्गामा स्नान गरे, गणेश्वर भगवान्लाई नमस्कार गरेर निष्पाप बने र ज्ञानी भए। उनको आज्ञा लिएर ती राजा प्रसन्न हुँदै यस ठाउँमा आए। संसारको बन्धनबाट मुक्त भएर उनले भक्तिपूर्वक मनमनै मन्त्र जपे। उनले भगवान् रुद्रका साथमा बस्नुभएकी विचित्र भयानक स्वरूपकी उमामाहेश्वरी देवीको दर्शन गरे। ती राजाले आश्विनकृष्ण नवमीको रातमा विभिन्न पूजासामग्रीहरू लिएर भक्तिपूर्वक यी देवीको आराधना गरे। उनले भूमिमा दण्डजस्तै लम्पसार परेर देवीलाई प्रणाम गरी परिक्रमा गर्दै बारम्बार स्तुति गरे र भक्तिपूर्वक एक लाख मन्त्र जपे। त्यसपछि शिवका गणहरूले सूर्यजस्तै चहकिलो ठूलो यानमा राखेर उनलाई ससम्मान उमामहेश्वरीको लोकमा लिएर गए ॥३५-४०॥

---

१०. त्रिविधैर्भक्तिर्मन्त्रैश्च, इति न.सं.पु.पाठः।
११. सन्निधाने च मे पुत्र ! तपः स्थास्यसि पूजकः, इति न.सं.पु.पाठः।
१२. स विरूक्षाय, इति न.सं.पु.पाठः।

कुर्याद् दानार्चनं योऽत्र पुण्यं तस्याऽक्षयं भवेत्[१३]। देहान्ते स परं स्थानं गमिष्यति न संशयः ॥४१॥
एकवारं जपन्मन्त्रमत्रैव च नरोत्तमः। जपादन्यत्र विहितात्[१४] कोटिकोटिगुणं फलम् ॥४२॥
एतत्ते कथितं विप्र ! योगिन्याश्च[१५] प्रशंसनम्। देव्याः प्रसादतश्चाऽसौ सदेहं मुक्तवान्नृपः ॥४३॥
भूयो गच्छ विरूपाक्ष ! नारायणह्रदोत्तमम्। नारायणं महालिङ्गं क्रोशैके पूर्वके ह्यतः ॥४४॥
स्नानञ्च कुर्याः प्रवरे ह्रदे त्वं नारायणाख्यं जलजञ्च लिङ्गम्।
प्राप्नोषि सिद्धिं परमां तदन्ते[१६] सम्पूज्य भक्त्या विधिवद्विनेत्र ॥४५॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां योगङ्गायोगेश्वरीमाहात्म्यं नाम एकविंशत्यधिकशततमोऽध्यायः ॥१२१॥

---

जसले यस ठाउँमा दान तथा पूजा गर्दछ, त्यो सबै अक्षय हुन्छ। शरीर छाडेपछि त्यो मानिस उत्तम स्थानमा पुग्छ, यसमा शङ्का छैन ॥४१॥ जुन मानिसले एक पटक मात्रै भए पनि यस ठाउँमा मन्त्र जप्छ भने त्यसले अन्य स्थानमा जप गरेको भन्दा करोडौं करोड गुणा बढी फल प्राप्त गर्दछ ॥४२॥

हे विरूपाक्ष ! मैले तिमीलाई योगेश्वरी भगवतीको माहात्म्य सुनाएँ। यी भगवतीको अनुग्रहले गर्दा ती राजा सशरीर मुक्त भएका थिए ॥४३॥ हे विरूपाक्ष ! यहाँबाट एक कोस पूर्व नारायण नाम गरेको तलाउ र नारायण महालिङ्ग छ। अब तिमी त्यस ठाउँमा जाऊ ॥४४॥ हे विरूपाक्ष ! तिमी त्यस श्रेष्ठ तलाउमा गएर स्नान गर। त्यसपछि जलभित्र रहेको नारायणलिङ्गको भक्तिपूर्वक यथाविधि पूजा गर। त्यसबाट तिमीले उत्तम सिद्धि पाउनेछौ ॥४५॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा योगगङ्गा, योगिनी र योगेश्वरीको माहात्म्यनामक एकसय एक्काइसौं अध्याय पूरा भयो।

---

१३. दानार्चनं कृतं योऽत्र तत्सर्वमक्षयं भवेत्, इति न.सं.पु.पाठः।
१४. अन्यत्र प्रजपाद् विप्र !, इति न.सं.पु.पाठः।
१५. एतस्याश्च, इति न.सं.पु.पाठः।
१६. समनुत्तमाञ्च, इति न.सं.पु.पाठः।

# द्वाविंशत्यधिकशततमोऽध्यायः

## नारायणसरोवरमहिमा

### स्कन्द उवाच

चिरञ्जीविवरं लब्ध्वा[1] देव्याः प्रसादतो मुने। सिद्धदेहोऽगमद्विप्रो नारायणह्रदं पुनः ॥१॥
स्नात्वा तत्र विरूपाक्षो लिङ्गं नारायणात्मकम्। तपःकृष्णदशम्याञ्च ह्यानर्च विधिवन्मुने ॥२॥
ततोऽपृच्छन्मुनिं विप्रो विनिद्रो भक्तितो निशि। निनायाऽर्द्धनिशां सम्यङ्माहात्म्यं ह्रदलिङ्गयोः ॥३॥

### विरूपाक्ष उवाच

नमस्ते भगवन्नार्य मुक्तिज्ञानप्रकारक। भवतः श्रोतुकामोऽहं माहात्म्यमीश्वरस्य च ॥४॥
अस्मिन् ह्रदे समुद्‌भूतं लिङ्गमेतत् कथं विभो[2]। केन प्रकाशितं लिङ्गं लोकाक्ष्णा तदगोचरम् ॥५॥

### नेमुनिरुवाच

अत्र नारायणो रुद्रं समाराधितवान् पुरा। समुद्‌भूतं ततो लिङ्गमेतद्ध्रदजलोत्तमे ॥६॥
तस्मात्तस्यैव नाम्नाऽयं विश्रुतो भुवि दुर्लभः। नारायणस्तमानर्च नारायणेश्वरस्ततः ॥७॥
अस्माद्ध्रदात्समुद्‌भूता नारायणी नदी श्रुता। लभेताऽस्या जलाप्लावात् नारायणपदं महत्[3] ॥८॥
आसीत्कश्चित्किरातश्च सर्वजन्तुभयङ्करः। पूर्वजन्मविपाकेन बधिरोऽसावभूद् द्विज ! ॥९॥
सभायामास्थिते पूर्वे कथयति[4] जने कथाम्। साक्ष्यकालेऽभवन्मौनी[5] तद्दोषैर्बधिरोऽभवत् ॥१०॥
फलं भोक्तुं[6] समागत्य चाऽत्र चोदुम्बरं कुजम्। आरुरोह फलार्थाय किरातोऽसौ क्षुधार्दितः ॥११॥

---

## अध्याय - १२२

### नारायणसरोवरको महिमा

कार्तिक स्वामीले भन्नुभयो - विरूपाक्ष भगवतीको कृपाले चिरञ्जीवी हुने वर प्राप्त गरेर सिद्ध शरीर लिई फेरि नारायण नामको तलाउमा गए। हे अगस्त्य मुनि ! विरूपाक्षले त्यहाँ स्नान गरेर माघकृष्ण दशमीका दिन नारायणलिङ्गको विधिपूर्वक पूजा गरे। त्यसपछि विरूपाक्षले भक्तिपूर्वक जाग्राम बसेर तलाउ र त्यस लिङ्गको माहात्म्य सोध्दै आधा रात बिताए ॥१-३॥

विरूपाक्षले भने - मुक्ति र ज्ञान दिने हे पूज्य नेमुनि ! हजुरलाई नमस्कार छ। म भगवान्‌को यस लिङ्गको माहात्म्य सुन्न चाहन्छु। यो तलाउ र लिङ्गको उत्पत्ति कसरी भयो ? लोकको आँखामा अप्रत्यक्ष रहेको यस लिङ्गलाई कसले प्रकाशमा ल्याएको थियो ? ॥४-५॥

नेमुनिले भन्नुभयो - पहिले यहाँ भगवान् विष्णुले शङ्करको आराधना गर्नुभएको थियो। त्यसै कारण यस तलाउको उत्तम जलमा लिङ्गको उत्पत्ति भएको हो। तसर्थ पृथ्वीमा दुर्लभ भएको यो लिङ्ग नारायणकै नामले प्रसिद्ध भयो। नारायणले यस लिङ्गको पूजा गर्नुभएको हुनाले यस लिङ्गको नाम नारायणेश्वर रह्यो। यसै तलाउबाट नारायणी नदी बगेकी छन्। यस नदीमा स्नान मात्र गर्दा पनि साधकले नारायणको पद प्राप्त गर्दछ ॥६-८॥

हे विरूपाक्ष ! अघि कुनै ब्राह्मण पूर्वजन्मको कर्मले गर्दा सबै प्राणीहरूलाई भय उत्पन्न गर्ने बहिरो किरात भएर जन्मिए। पूर्वजन्ममा कुनै काममा प्रजाहरूले त्यस ब्राह्मणलाई साक्षी राखेका थिए। न्यायनिरूपण गर्ने सभामा पूर्वपक्षले आफ्ना तर्क राखेपछि साक्षीरूप ती ब्राह्मणले केही कुरा नबोली चुप लागेर बसेको हुँदा त्यसै दोषले गर्दा ती बहिरा भए। भोकले आत्तिएका ती किरात फल खानका लागि यहाँ आएर फल टिप्न डुम्रीको रुखमा चढे ॥९-११॥

---

१. लब्ध्वा वरञ्चिरञ्जीवम्, इति न.सं.पु.पाठः।
२. अस्मिन् ह्रदे समुद्‌भूतमेतल्लिङ्गं कथं विभो, इति न.सं.पु.पाठः।
३. अस्याञ्च स्नानमात्रेण नारायणपदं लभेत्, इति न.सं.पु.पाठः।
४. कथ्यमाने, इति न.सं.पु.पाठः।
५. साक्षिभूतेऽभवन्मौनी, इति न.सं.पु.पाठः।
६. फलाशितुम्, इति न.सं.पु.पाठः।

तद्भारभग्नशाखोऽसौ कुजो[७] ह्रदे पपात च। ममज्जाऽऽशु जले कृच्छ्रादुत्तीर्य तीरमागमत् ॥१२॥
अशृणोत्पक्षिणां शब्दं कोलाहलं मिथो रुतम्। दिव्यकर्णोऽभवन्म्लेच्छः पशुवाक्यविशारदः[८] ॥१३॥
अप्येकयोजनस्थानामाह्वानगानरोदनम्। तत्सर्वमशृणोन्म्लेच्छः सुस्पष्टं स्वान्तिके यथा ॥१४॥
कर्णतीर्थमिति ख्यातं ततो लोकैश्च सर्वदा। स्नातव्यं मनुजैश्चात्र दिव्यकर्णफलार्थिभिः ॥१५॥
स्वात्मानमात्मना मेने स कृतार्थ इति ध्रुवम्। एतद्ह्रदजलस्पर्शाद् देहो मे चैवमेव हि[९] ॥१६॥
ज्ञात्वा तीर्थवरं म्लेच्छश्चात्र तस्थौ निरन्तरम्। फलमूलाशनो नित्यं पिबन्नारायणीजलम्[१०] ॥१७॥
एकसंवत्सरान्तेऽसौ पञ्चत्वं प्राप्तवान् द्विज। माघकृष्णचतुर्दश्यां स्पृशन्नस्य जलं तटे[११] ॥१८॥
अत्रागत्य गणाः शीघ्रं तमास्थाय विमानके। निन्युः शिवपुरं दिव्यं नानामानपुरःसरम् ॥१९॥
स एव बधिरः ख्यातो रुद्रस्यानुचरोऽनिशम्। प्रमथानां गरिष्ठोऽभूदत्र देहविसर्जनात्[१२] ॥२०॥
भूयो गच्छ विरूपाक्ष ! पश्चिमायामतो दिशि[१३]। ज्योतीरूपो[१४] महारुद्रो यत्राऽऽस्ते प्रमथैः सह ॥२१॥
योगतीर्थ इतिख्याते स्नात्वा तमर्चयाऽऽशु वै। तत्रोषित्वा निशामेकां ततोऽन्यत्र प्रगम्यताम् ॥२२॥
एतन्मया ते कथितं महत्त्वं[१५] नारायणाख्यस्य हि शूलिनो वै।
अस्य ह्रदस्याऽऽर्य्य विरूपनेत्र ! वक्ष्यामि भूयः शृणु तत्र यत्तत् ॥२३॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां नारायणेश्वरह्रदमाहात्म्यं नाम द्वाविंशत्यधिकशततमोऽध्यायः ॥१२२॥

---

तिनको भारले गर्दा डुम्रीको हाँगा भाँचियो र उनी तुरुन्त यसै तलाउमा खसे र पानीमा डुबे। त्यसपछि अत्यन्त कष्टका साथ उत्रिएर उनी तीरमा आए। ती किरातले परस्परमा आवाज निकालिरहेका पक्षीहरूको कोलाहल सुने र यढाबाट पशुको आवाज पनि सुने। त्यसबाट तिनको कान दिव्य भयो र उनी पशुवाक्यका ज्ञाता बने। ती किरातले एक योजन पर रहेका व्यक्तिहरूको बोली, गाना, क्रन्दन सबै नजिकै भएजस्तै गरी स्पष्टसित सुने। त्यसपछि यस तीर्थको नाम कर्णतीर्थ भयो र जनताहरूले दिव्यकर्णको फल चाहना गर्ने मानिसहरूले यस ठाउँमा स्नान गर्नुपर्छ भनेर भने ॥१२–१५॥

ती किरातले आफैँले आफूलाई कृतार्थ ठाने र यो जलको स्पर्शले गर्दा नै मेरो शरीर यस्तो भएको हो, अन्यथा हुने थिएन भन्ने कुरा उनले ठाने। यो तीर्थ उत्तम रहेछ भन्ने ठानेर उनी त्यसै ठाउँमा बसे। उनले भोक मेट्न फलफूल खाए र तिर्खा मेट्न पानी पिए। एक वर्षपछि माघकृष्ण चतुर्दशीका दिन यसै तीर्थको तटमा जल स्पर्श गरी ती किरातले प्राणत्याग गरे। यहाँ आएर शिवजीका गणहरूले तिनलाई तुरुन्त विमानमा राखे र विभिन्न किसिमका सम्मान दिएर दिव्य शिवलोकमा पुऱ्याए। तिनै बहिरा किरात अहिले भगवान् रुद्रका सेवक भएर बसिरहेका छन्। यसै तलाउमा शरीर त्यागेको हुँदा उनी प्रमथगणका नायक भएका हुन् ॥१६–२०॥

हे विरूपाक्ष ! फेरि तिमी यहाँबाट पश्चिम दिशातिर जाऊ। त्यहाँ प्रमथगणका साथ महारुद्रको ज्योतिर्लिङ्ग विराजमान छ। योगतीर्थ नाम गरेको तीर्थमा स्नान गरेर तुरुन्त त्यस लिङ्गको पूजा गर। त्यहाँ एक रात बसेर त्यसपछि अन्यत्र जाऊ। मैले नारायण तलाउ र नारायणेश्वर लिङ्गको माहात्म्य बताएँ। त्यहाँ अरु जे जति छ, त्यो सबै कुरा बताउनेछु, फेरि सुन ॥२१–२३॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा नरायणेश्वरसरोवरको माहात्म्यनामक एकसय बाइसौं अध्याय पूरा भयो।

---

७. अस्मिन्, इति न.सं.पु.पाठः।
८. पशूनामपि दूरतः, इति न.सं.पु.पाठः।
९. एतज्जलस्पृशाद्देहो मे चैवमेव नान्यथा, इति न.सं.पु.पाठः।
१०. नित्यमपीबमृगया जलम्, इति न.सं.पु.पाठः।
११. एतज्जलं स्पृशन् तटे, इति न.सं.पु.पाठः।
१२. अस्मिन् ह्रदे तनुत्यजात्, इति न.सं.पु.पाठः।
१३. पश्चिमे ककुभे ह्यतः, इति न.सं.पु.पाठः।
१४. ज्योतिर्लिङ्गः, इति न.सं.पु.पाठः।
१५. माहात्म्यम्, इति न.सं.पु.पाठः।

# त्रयोविंशत्यधिकशततमोऽध्यायः

## योगतीर्थज्योतिर्लिङ्गयोर्माहात्म्यम्

स्कन्द उवाच

अत्र स्नात्वा विरूपाक्षो दूरदर्शी ह्यभूत्पुनः। दशयोजनसम्भूतं वृत्तान्तमशृणोन्मुने ॥१॥
भूयोऽगमत्समन्तेन वारुण्यां दिशि वै द्विज। सहस्रधनुषाञ्चैव दूरे तस्माद्विरूपदृक् ॥२॥
योगतीर्थजले स्नात्वा[1] ज्योतिर्ल्लिङ्गं समर्चितम्। भक्त्या नानाविधैः पुष्पैस्त्रयोदश्यां तपोऽसिते ॥३॥
उपोष्य तन्निशायां स विनिद्रः पूजकः पुनः। अपृच्छन्नेमुनिं भक्त्या तन्माहात्म्यं घटोद्भव ॥४॥

विरूपाक्ष उवाच

ज्ञानदीपप्रकाशाय नमस्ते गुरुरूपिणे। भवतः श्रोतुकामोऽहं भूयो वार्तां पुरोद्भवाम् ॥५॥
एतल्लिङ्गस्य माहात्म्यमुद्भवश्च[2] कथं विभो। ज्योतिर्लिङ्गमिति ख्यातं योगतीर्थं कथं[3] तथा ॥६॥

नेमुनिरुवाच

सनको नाम योगीशः पुराऽऽसीद् ब्रह्मणः सुतः। तन्मानससमुद्भूतः सदा सर्वदयापरः ॥७॥
रत्नावती नदी पुण्या चित्रह्रदोद्भवा पुरा। नारायणी नदी चाऽत्र तयोर्योगे समाययौ ॥८॥
सस्नौ योगीश्वरो विप्र ! योगस्नानेन योगतः। योगतीर्थमिति ख्यातमेतत्तीर्थन्ततो बुधैः ॥९॥
अत्राऽऽगत्य मुनिश्रेष्ठो योगं दध्यौ भृशं परम्। एतत्स्थाने समास्थाय[4] निर्विकारेन्द्रियोऽचलः ॥१०॥
कार्त्तिके शुक्लनवम्यां ध्यायमानो महानिशि। ज्योतिर्मयं महालिङ्गमेतच्च सनकार्चितम् ॥११॥

---

## अध्याय – १२३

### योगतीर्थ र ज्योतिर्लिङ्गको माहात्म्य

कार्तिक स्वामीले भन्नुभयो – विरूपाक्ष यस तीर्थमा स्नान गरेर फेरि दूरदर्शी बने। उनले दश योजन टाढा भएको कुराकानी पनि सुने। फेरि विरूपाक्ष सिद्धर्षि नेमुनिका साथ त्यहाँबाट पश्चिम दिशातिर लागे र हजार धनुष जति टाढा गए। योगतीर्थको जलमा स्नान गरेर माघकृष्ण त्रयोदशीका दिन विभिन्न किसिमका पूजासामग्री लिएर उनले ज्योतिर्लिङ्गको पूजा गरे। हे अगस्त्य मुनि ! पूजा गरिसकेपछि त्यसै रातमा जाग्राम बसेर त्यस तीर्थको र लिङ्गको माहात्म्य विरूपाक्षले भक्तिपूर्वक नेमुनिसँग फेरि सोधे ॥१–४॥

विरूपाक्षले भने – ज्ञानको बत्ती बाल्ने गुरुरूप भएका हजुरलाई नमस्कार छ। म अघि भएको वृत्तान्त फेरि सुन्न चाहन्छु। यो लिङ्गको उत्पत्ति र यसको महत्त्व कसरी बढ्यो ? योगतीर्थ एवं ज्योतिर्लिङ्गको प्रसिद्धि कसरी फैलियो ? यसबारे मलाई बताउनुहोस् ॥५–६॥

नेमुनिले भन्नुभयो – अघि सनक नाम गरेका ब्रह्माका एक मानसपुत्र पैदा भए। ती सम्पूर्ण प्राणीलाई दया गर्ने योगीश्वर थिए। यहाँ रत्नावती नाम गरेकी पुण्य नदी छन्। अर्को चित्रदहबाट पैदा भएकी नारायण नामकी नदी छन्। उनी (सनक) यिनै दुई नदीको सङ्गमस्थलमा आए ॥७–८॥

हे विरूपाक्ष ! ती योगीश्वरले योगपूर्वक यहाँ स्नान गरेको हुँदा विद्वान्हरूले यसलाई योगतीर्थ भने। यस ठाउँमा आएर मुनिश्रेष्ठ ती सनकले निर्विकार भएर सबै इन्द्रियहरूलाई अचल राखी राम्ररी योग गर्दै बारम्बार भगवान्को ध्यान गरे। कार्तिकशुक्ल नवमीका दिन मध्यरातमा पूजा गरेर सनकमुनिले ध्यान गरिरहेको समयमा यस ज्योतिर्मय लिङ्गको प्रादुर्भाव भयो ॥९–११॥

---

१. योगतीर्थजलाप्लाव्य, इति न.सं.पु.पाठः।
२. ... मुद्भूतञ्च, इति न.सं.पु.पाठः।
३. ख्यातो योगतीर्थस्य वै, इति न.सं.पु.पाठः।
४. तदाज्ञाय, इति न.सं.पु.पाठः।

ज्योतिर्मयं तदा लिङ्गं विराजते महाप्रभम्। घृतपूर्णे च तत्पात्रे नक्तं दीपशिखेव हि ॥१२॥
ज्योतिर्लिङ्गं समालोक्य सनकोऽपूपुजन्मुदा। नानोपहारकैर्भक्त्या जपैः स्तवैः परिक्रमैः ॥१३॥
ददौ तस्मै वरं रुद्रः सततं जीवितं पुनः। ब्रह्मत्वञ्च द्वितीयं वै योगीश्वरं विरूपदृक् ॥१४॥
एतल्लिङ्गार्चनाच्चैव निन्युः स्वर्गं गणा इमम्[५]। अद्यादि सनकोऽसौ हि चाऽभूद्योगीश्वरो विभुः ॥१५॥
भूयः शृणु विरूपाक्ष ! कश्चिन्मुक्तो द्विजः पुरा। एतल्लिङ्गप्रसादात्स सदेहश्चाऽत्र सत्वरम् ॥१६॥
अशुचिर्बहुभार्यश्च बह्वाहारः सूचीमुखः[६]। तद्दोषेणाऽशुचिर्जिह्वा जाता सोऽभूच्च भिक्षुकः[७] ॥१७॥
सोऽभवत्क्षुत्पिपासार्त्तो भिक्षावृत्तिं समाचरन्। अत्रैव प्राप्तवान् विप्रः समुत्तीर्य्यावनीं पुरा ॥१८॥
ददर्शाऽत्र मुनिं सोऽपि हारीतं नाम विश्रुतम्। योगतीर्थे पितृन् देवान् तर्पयन्तं कुशोदकैः ॥१९॥
उपाश्रित्य ततस्तस्य सूचीमुखः शनैः शनैः। भक्त्या प्रणम्य चाऽपृच्छतस्वकष्टकारणं मुनिम् ॥२०॥

सूचीमुख उवाच

मुनिप्रवर पुण्यात्मन् ![८] नतोऽस्मि तेऽङ्घ्रिपुष्करम्। लोकप्रणतदेहाय ज्ञानदाय च ते नमः ॥२१॥
कथं मोक्ष्यति मे देहः क्षुत्पिपासार्दितस्त्विह। तद्बीजं वद मे तात सर्वज्ञानप्रदायक ॥२२॥

हारीत उवाच

पूर्वजन्मविपाकेन त्वमिह क्लिश्यसि ध्रुवम्। तत्पापानि विनश्यन्ति पुत्राऽत्रैव न संशयः ॥२३॥
त्वत्स्नानाद्योगतीर्थेऽत्र पापं नश्यति तेऽधुना। अत ऊर्ध्वं समागत्य ज्योतिर्लिङ्गं प्रपूजय ॥२४॥
प्राप्स्यसि वाञ्छितं कामं तत्रैव वत्स मा चिरम्। गच्छ सूचीमुखार्य ! त्वं स्नाह्यत्र भक्तिभिर्द्रुतम् ॥२५॥

---

घिउले भरिएको भाँडामा राति बत्तीको ज्वालाजस्तै गरी त्यसबखत अत्यन्त तेजस्वी ज्योतिर्मय लिङ्ग प्रकट भयो। ज्योतिर्लिङ्गलाई देखेर सनकमुनिले विभिन्न किसिमका पूजासामग्रीद्वारा सभक्ति प्रसन्न हुँदै पूजा गरे, जप गरे, स्तुति गरे र परिक्रमा गरे। हे विरूपाक्ष ! ती सनकमुनिलाई भगवान् शङ्करले चिरञ्जीवी बन भन्ने पहिलो वर र ब्रह्मचारी बन भन्ने दोस्रो वर दिनुभयो। यसै ज्योतिर्लिङ्गलाई आराधना गरेर सनकमुनि स्वर्ग गए। आजसम्म पनि उनलाई योगीश्वर भनिँदैछ ॥१२-१५॥

हे विरूपाक्ष ! फेरि सुन - अघि कुनै सूचीमुख नामक ब्राह्मण यसै लिङ्गको अनुग्रहबाट सशरीर तुरुन्त मुक्त भएका थिए। अघि उनी अपवित्र थिए, उनका धेरै पत्नी थिए, धेरै खान्थे, त्यसैले गर्दा तिनको जिब्रो अपवित्र थियो। उनले भिक्षा मागेर जीविका चलाउँथे। अघि ती ब्राह्मण भोक र तिर्खाले आत्तिएर भिक्षा माग्दै पृथ्वीमा घुम्ने क्रममा यसै ठाउँमा आइपुगे। उनले यस योगतीर्थमा पितृ र देवतालाई कुश र जलले तर्पण गरिरहेका हारीत नाम गरेका ऋषिलाई देखे। त्यसपछि ती सूचीमुखले विस्तार विस्तार ती ऋषिको नजिकै गएर आफूले दुःख पाउनाको कारण उनीसित भक्तिपूर्वक सोधे ॥१६-२०॥

सूचीमुखले भने - हजुर मुनिहरूमा श्रेष्ठ हुनुहुन्छ, हजुरका दुई पाउरूपी कमलमा म प्रणाम गर्दछु। सम्पूर्ण प्राणीहरूले हजुरको शरीरलाई ढोग्दछन्। यस्ता ज्ञान दिने हजुरलाई नमस्कार छ। भोक र प्यासले ग्रस्त भएको यो मेरो शरीर कसरी मुक्त हुन्छ ? सम्पूर्ण ज्ञानदाता हे मुनि ! हजुरले त्यसको कारण बताइदिनुपर्‍यो ॥२१-२२॥

हारीतले भने - पूर्वजन्मको कर्मले गर्दा यस जन्ममा तिमीले दुःख पाएका छौ। हे बाबु ! त्यो तिम्रो पाप यसै क्षेत्रमा नाश हुन्छ, यसमा शङ्का छैन ॥२३॥ यस योगतीर्थमा स्नान गर्‍यौ भने अहिले नै तिम्रो पाप नाश हुन्छ। त्यसपछि यहाँबाट माथि गएर तिमीले ज्योतिर्लिङ्गको पूजा गर्नुपर्छ ॥२४॥ हे बाबु ! त्यसै ठाउँमा तिमीले आफ्नो इच्छा अनुसारको फल पाउनेछौ, ढिलो नगर। हे सूचीमुख ! यस तीर्थमा भक्तिपूर्वक स्नान गरेर छिट्टै गइहाल ॥२३-२५॥

---

५. स्वर्गमादाय वै ययौ, इति न.सं.पु.पाठः।
६. बहुपत्नी च वह्वाहारी पुराऽभवत्, इति न.सं.पु.पाठः।
७. तद्दोषेणाशुची जिह्वा भिक्षाटनं ततोऽचरत्, इति न.सं.पु.पाठः।
८. मुनीनां प्रवर्याहम्, इति न.सं.पु.पाठः।

नेमुनिरुवाच

इत्याकर्ण्य मुनेर्वाक्यं योगतीर्थजलाप्लुतः । स्नात्वा च[९] विधिवद्विप्रो ययौ यत्र महेश्वरः ॥२६॥
वैशाखपूर्णिमायां स स्नात्वा तीर्थे सूचीमुखः । अपूपुजन्मुदा भक्त्या चैतल्लिङ्गं समर्हणैः ॥२७॥
पञ्चरात्रं सुखं प्राप्य जजापाहर्निशं द्विजः । पञ्चोपचारकैर्भक्त्या सम्पूज्य स पुनः पुनः ॥२८॥
वैशाखकृष्णपञ्चम्यामर्द्धरात्रे तदा द्विजः । गणा अत्राययू रौद्रा रुद्रपार्श्वचरो भव ॥२९॥
इति लब्धवरस्तीर्थे स्नात्वा निष्पापतां गतः[१०] । भूयो गच्छ विरूपाक्ष ! अतो याम्यां दिशि ध्रुवम् ॥३०॥
रत्नचूडेश्वरो यत्र योजनार्द्धे विदूरके । तत्र ह्रदो महाशैलान्नवधारास्रवोद्भवः ॥३१॥
यक्षलोकैश्च यत्रेशः सेवितो गच्छ तत्र वै ।
एतच्च तुभ्यं कथितं मया वै श्रीज्योतिरीशस्य विरूपनेत्र ।
माहात्म्यमीशस्य परं महत्त्वं[११] योगाख्यतीर्थस्य प्रशंसनञ्च[१२] ॥३२॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां योगतीर्थज्योतिर्ल्लिङ्गयोर्माहात्म्यं नाम त्रयोविंशत्यधिकशततमोऽध्यायः ॥१२३॥

---

नेमुनिले भन्नुभयो – मुनिको यस्तो वचन सुनेपछि योगतीर्थको जलमा स्नान गरेर ती ब्राह्मण जहाँ महेश्वर बस्नुभएको थियो, त्यसै ठाउँमा गए। वैशाखशुक्ल पूर्णिमाको दिन यस तीर्थमा स्नान गरेर ती सूचीमुखले विभिन्न पूजासामग्री लिएर भक्तिपूर्वक यस लिङ्गको पूजा गरे। पाँच रातसम्म ती ब्राह्मणले भक्तिपूर्वक पञ्चोपचारद्वारा त्यस लिङ्गको बारम्बार पूजा गरे र रातिदन मन्त्र जप गरे। वैशाखकृष्ण पञ्चमीका दिन आधारातमा शिवजीका गणहरू यहाँ आए र उनलाई तिमी शिवजीका श्रेष्ठ पार्श्ववर्ती बन भने। योगतीर्थको जलमा गरेको स्नानको प्रभाव र भगवान्‌का कृपाले गर्दाउनले रुद्रको पार्श्ववर्ती हुने वर पाए र उनी पापबाट मुक्त भए ॥२६–३०½॥

त्यसपछि नेमुनिले भन्नुभयो – अब तपाईं दक्षिण दिशामा जानुहोस्। यस ठाउँबाट दुई कोस पर रत्नचूडेश्वर भगवान् हुनुहुन्छ। त्यहाँ महापर्वतबाट जलधारहरू एकैचोटि वहँदा बनेको ठूलो तलाउ छ। यस तीर्थमा अघि गणहरूले आराधना गरेका थिए। मैले तिमीलाई ज्योतिर्लिङ्गको र महातीर्थको सबै माहात्म्य बताएँ। यी सबै तीर्थका महत्त्व अवर्णनीय छन्। हे विरूपाक्ष ! मैले तिमीलाई ज्योतिरीश्वर भगवान्‌को सबै चरित्र बताएँ। हे महाप्रभावशाली विरूपाक्ष ! मैले विशेष रूपमा योगतीर्थको महिमा पनि बताएँ ॥३१–३२॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा योगतीर्थ र ज्योतिर्लिङ्गको माहात्म्यनामक एकसय तेइसौं अध्याय पूरा भयो।

---

९. आप्लाव्य, इति न.सं.पु.पाठः।
१०. योगतीर्थजलाप्लाव्य निष्पापोऽजप्रसादतः, इति न.सं.पु.पाठः।
११. महाप्रभाव, इति न.सं.पु.पाठः।
१२. विशेषितञ्च, इति न.सं.पु.पाठः।

# चतुर्विंशत्यधिकशततमोऽध्यायः

## रत्नसरोवररत्नचूडेश्वरशिवलिङ्गयोर्महिमा

स्कन्द उवाच

योगतीर्थे ततः स्नात्वा योगीश्वरोऽभवद् द्विजः। रत्नचूडेश्वरो यत्र मुनिना तेन वै समम् ॥१॥
रत्नह्रदं महाशैलं समारुह्य विरूपदृक्। रत्नह्रदे पुनः सस्नौ भक्त्या च विधिवन्मुने ॥२॥
तपःकृष्णचतुर्दश्यां स्नात्वा च तद्ध्रदे द्विजः। अर्हति स्म शिवं भक्त्या रत्नचूडेश्वरं ह्रदे ॥३॥
निरशनं व्रतं कृत्वा विप्रोऽसौ भक्तितो निशि[१]। विनिद्रोऽपूजयत्[२] रुद्रं मणिचूडेश्वरं तदा ॥४॥
माहात्म्यञ्च ततोऽपृच्छत्[३] तन्निशायाञ्च नेमुनिम्। लिङ्गस्य रत्नचूडस्य प्रणम्य तं घटोद्भव ॥५॥

विरूपाक्ष उवाच

नमस्ते मुनये धीमन् ज्ञानदाय स्वसेविनाम्। श्रोतुमिच्छामि माहात्म्यमेतयोर्ह्रदलिङ्गयोः ॥६॥
मोहान्धानाञ्च पापानां ज्ञानदीपप्रकाशक। उत्तरापेक्षिणं माञ्च[४] वदेतत्खलु नेमुने ॥७॥

नेमुनिरुवाच

ब्रह्मणात्र ह्रदं पूर्वं निर्माय द्विज सुन्दरम्। रत्नेन कल्पितं लिङ्गं रत्नचूडेशमीरितम् ॥८॥
एतद्ध्रदात्समुद्भूता नवधारा नदीवरा। एतस्य शृणु माहात्म्यं प्रवक्ष्याम्यहमद्भुतम् ॥९॥
आसीत्कश्चिद् द्विजो वत्स मुक्तश्चात्र ह्रदोत्तमे। श्रावणीपूर्णिमायां स चैतल्लिङ्गप्रदर्शनात् ॥१०॥
अनाचारी ह्यभूद् विप्रः पूर्वजन्मनि सन्ततम्। तद्दोषेण समाजेऽस्मिन्[५] पिशाच इति विश्रुतः ॥११॥
शौचहीनः कुचैलाङ्गी मिथ्यावादरतः सदा। लोकविद्वेषणोऽजस्रं सर्वाशनोऽभवत्तदा ॥१२॥

---

## अध्याय - १२४

### रत्नसरोवर र रत्नचूडेश्वर शिवलिङ्गको महिमा

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! त्यसपछि विरूपाक्ष योगतीर्थमा स्नान गरेर योगीश्वर बनी जहाँ रत्नचूडेश्वर हुनुहुन्थ्यो, त्यसै ठाउँमा नेमुनिका साथ गए। विरूपाक्षले त्यस ठूलो पर्वतमा चढेर रत्नसरोवरमा भक्तिपूर्वक विधिवत् फेरि स्नान गरे। माघकृष्ण चतुर्दशीका दिन त्यस तलाउमा स्नान गरेर विरूपाक्षले भक्तिपूर्वक तलाउभित्र रहेका रत्नचूडेश्वर महादेवको पूजा गरे। त्यसपछि विरूपाक्षले खाना नै नखाईकन भक्तिपूर्वक राति जाग्राम बसेर मणिचूडेश्वर महादेवको पूजा गरे। हे अगस्त्य मुनि ! त्यसपछि त्यसै दिन राति रत्नचूड लिङ्गलाई नमस्कार गरेर विरूपाक्षले नेमुनिसित त्यस लिङ्गको माहात्म्य सोधे ॥१-५॥

विरूपाक्षले भने – आफ्ना भक्तहरूलाई ज्ञान दिने बुद्धिमान् हे मुनि ! हजुरलाई नमस्कार छ। यो तलाउ र लिङ्गको माहात्म्य म सुन्न चाहन्छु। मोह र पापमा डुबेका व्यक्तिहरूलाई ज्ञानको बत्ती बालेर प्रकाश छरिदिने हे नेमुनि ! प्रश्न गर्न लागेको मलाई यी सबै कुरा बताइदिनुहोस् ॥६-७॥

नेमुनिले भन्नुभयो – हे विरूपाक्ष ! यो तलाउ अघि यस ठाउँमा ब्रह्माजीले बनाउनुभएको थियो। रत्नले बनेको लिङ्ग हुँदा यसको नाम रत्नचूडेश्वर रहेको हो। यसै दहबाट नौवटा धारा भएर नदीहरू पैदा भए। यसको अद्भुत माहात्म्य बताउँछु, सुन। हे बाबु ! एउटा कुनै ब्राह्मण श्रावणीपूर्णिमाको दिन यस लिङ्गको दर्शन गरेर यसै तलाउमा मुक्त भएका थिए। ती ब्राह्मण पूर्वजन्ममा निरन्तर आचाररहित भएका अर्थात् भ्रष्ट बनेर रहेका थिए। त्यसैको दोषले गर्दा उनी समाजमा पिशाचका नामले प्रसिद्ध भएर जन्मिए। पछिल्लो जन्ममा तिनको शौच थिएन, उनका अङ्गहरू सबै मैला लुगाले युक्त थिए। उनी सधैँ भुटो बोल्दथे, दुनियालाई रीस उठाउँथे र सबै थोक खान्थे ॥८-१२॥

---

१. भूत्वा विनाशैर्विप्रः तन्निशायां हि भक्तितः, इति न.सं.पु.पाठः। २. विनिद्रः पूजकः, इति न.सं.पु.पाठः।
३. ततोऽपृच्छन्माहत्म्यं स, इति न.सं.पु.पाठः। ४. प्रश्नकामाय मे तात, इति न.सं.पु.पाठः।
५. समुद्भूतः, इति न.सं.पु.पाठः

एकदा दिवसे वत्स विरक्तो निःसृतो गृहात्। मातापित्रोः प्रियायाश्च जाते देहविसर्जने[६] ॥१३॥
पञ्चविंशतिवर्षीयः[७] गङ्गातीरं समाव्रजत्। ब्रह्मचारिणं ददर्शाऽसौ स्नात्वा सन्ध्यामुपाश्रितम् ॥१४॥
सोऽपि चाऽऽप्लाव्य गङ्गायामगमद्धि तदन्तिकम्। प्रणामाय करौ तस्य पादस्पर्शसमुद्यतौ[८] ॥१५॥
स्प्रष्टुं पादौ तत्परं[९] तमवलोक्य द्विजं यतिः। मा मा हे स्पृश मां पाप चेत्युक्त्वा चञ्चलोऽभवत्[१०] ॥१६॥
ततः साश्रुमुखोऽभूत्स[११] तमापृच्छद्यतिं द्विजः। कथं मोक्ष्यामि तातेति चैतत्कलेवरं मम ॥१७॥
हिमवत्पर्वतं गच्छ ततः पूतो भविष्यति। नेपाले चोत्तरे भागे तत्र लिङ्गं स्पृशाशु च ॥१८॥
तदाकर्ण्य वचो विप्रो यतिमुखाच्च्युतं मुदा। कृत्वेति पथ्यमार्य्योक्तं ह्रदोत्तमे ततोऽगमत् ॥१९॥
अत्राप्तवान्पिशाचोऽसावुत्तीर्याद्रीन्पुरादिकम्। आषाढपूर्णिमायां स सस्नौ ह्रदोत्तमे द्विज ॥२०॥
पूर्वाषाढर्क्षयुक्तायामाषाढीपूर्णिमानिशि। अर्चति स्म ह्रदे सोऽस्मिन्नेतल्लिङ्गं समर्हणैः ॥२१॥
तं पूजकं समालोक्य रत्नचूड उवाच हि। पूजितं वीरमार्गेण त्वयाऽस्मिन् भीषणे वने[१२] ॥२२॥

रत्नचूडेश्वर उवाच

भो पिशाचोऽसि मद्भक्तश्चात्र स्नानान्मदर्चनात्। वीरमार्गेण मत्पूजा कृताऽस्मिन् निर्जने वने[१३] ॥२३॥
अद्यादि प्रमथानां त्वं गरिष्ठो मे भवानुगः। सर्वपापैर्विमुक्तोऽसि स्नानदर्शनपूजनात्[१४] ॥२४॥

---

एकदिन बाबु, आमा र धर्मपत्नी मरेपछि विरक्त भएर ती आफ्नो घरबाट निस्किए। पच्चीस वर्ष उमेरका ती ब्राह्मण गङ्गाजीको तीरमा गए। त्यहाँ उनले स्नान गरेर सन्ध्या गर्न लागेका ब्रह्मचारीलाई देखे। उनले पनि गङ्गामा नुहाए र ब्रह्मचारीको नजिकै गए। त्यहाँ उनले दुवै हातले ब्रह्मचारीको पाउ समातेर नमस्कार गर्न खोजे। आफूलाई छोएर प्रणाम गर्न लागेका ती ब्राह्मणलाई ब्रह्मचारीले "ए पापी ! मलाई न छो" भन्दै हडबडका साथ पछाडि सरे। ब्राह्मणले आँखाभरि आँसु पारेर ब्रह्मचारीलाई भने– "हे ब्रह्मचारी ! मेरो शरीरलाई म कसरी मुक्त गराउन सक्छु ? बताइदिनुहोस्" ॥१३–१७॥

ब्रह्मचारीले ब्राह्मणलाई 'नेपालको उत्तर भागमा हिमालय छ। तिमी तुरुन्तै त्यहाँ जाऊ र शिवलिङ्गको स्पर्श गर' भने ॥ योगीको मुखबाट झरेको यो बोली सुनेर साँच्चै भन्नुभएको हो भन्ने ठानी ती ब्राह्मण हिमालय पर्वतमा रहेको उत्तम तलाउमा गए। पिशाचरूपधारी ती ब्राह्मणले पर्वत र नगर नाघ्दै आषाढपूर्णिमाका दिन त्यस उत्तम तलाउमा आएर स्नान गरे। पूर्वाषाढा नक्षत्रयुक्त आषाढपूर्णिमाका दिन राति उनले विभिन्न पूजासामग्री लिएर यस तलाउमा रहेको यस लिङ्गको पूजा गरे। भक्तिपूर्वक पूजा गर्न लागेका ती ब्राह्मणलाई देखेर रत्नचूडेश्वर भगवान्ले 'यस भयानक वनमा वीरमार्गले तिमी मेरो पूजा गर्दैछौ' भन्नुभयो ॥१८–२२॥

रत्नचूडेश्वरले अगाडि भन्नुभयो – हे भक्त ! तिमी पिशाच थियौ, वीरमार्गले डरलाग्दो विधिबाट मेरो पूजा गरेको हुँदा भक्त बन्यौ, यस तीर्थमा स्नान गऱ्यौ। त्यसका प्रभावले गर्दा आजदेखि मेरो प्रमथगणमध्येका मुख्य सेवक भयौ। तिमी भक्ति, पूजा र स्नानका प्रभावले सबै पापबाट मुक्त भयौ ॥२३–२४॥

नेमुनिले भन्नुभयो – यसरी वर दिएर तलाउमा भगवान् शङ्कर अन्तर्धान हुनुभयो। हे विरूपाक्ष ! वर पाएर त्यस पिशाचले पनि आफूलाई कृतार्थ ठान्यो ॥२५॥

---

६. पर्यपर ते ताते च मातरि स्वबन्धां ततः, इति न.सं.पु.पाठः।
७. पञ्चविंशत्समायुक्तः, इति न.सं.पु.पाठः।
८. प्रणन्तुं तमुपाविश्य तदङ्घ्रिमस्खलत्करम्, इति न.सं.पु.पाठः।
९. स्वास्पर्शितुं समुद्यन्, इति न.सं.पु.पाठः।
१०. मा मा स्पर्शय मां पाप इत्युक्त्वाभूच्चलद् भृशम्, इति न.सं.पु.पाठः।
११. ततो ह्यश्रुमुखोऽभूत्स, इति न.सं.पु.पाठः।
१२. वीरेण पूजितं भक्त्या भीषणे निर्जने वने, इति न.सं.पु.पाठः।
१३. मां वीरेणार्चितं यस्मात्यक्तजन्तुर्विभीषणः, इति न.सं.पु.पाठः।
१४. अत्राप्लवान्मदर्चनात्, इति न.सं.पु.पाठः।

नेमुनिरुवाच

दत्त्वा वरं हरस्तस्मै चाऽत्र ह्रदे तिरोदधे। सोऽपि कृतार्थतां मेने लब्धवरो विरूपदृक् ॥२५॥
तस्मिन्नवसरे दूता रुद्रस्याऽत्र समाव्रजन्। पुष्पकपाणयः शीघ्रं गीतवाद्यप्रमोदितम् ॥२६॥
तमास्थाप्याशु तद्याने निन्युः शिवपुरं गणाः। अभिषिच्य ह्रदे तोयैर्गणत्वेनाद्रितं तदा ॥२७॥
संस्नाति यस्तु धीरोऽत्र रत्नचूडेश्वरं पुनः। समर्चति च सङ्क्रान्त्यां मधोः पुण्यफलं शृणु ॥२८॥
शैलारोहणमात्रेण[१५] जन्मैनसा विमुच्यते। मुक्तस्त्रिजन्मजैः पापैरेतद्ध्रदजलाप्लवात् ॥२९॥
लिङ्गदर्शनमात्रेण सर्वैनोभिर्विमुच्यते। याति शिवपुरं साक्षात्तद्यानेन सविग्रहः ॥३०॥
अतो याम्ये च देशे त्वमेतत्पर्वतकिङ्शुके। क्रोशमात्रे ह्यधः स्थाने यत्र वागीश्वरो व्रज ॥३१॥
वीरतीर्थे ततः स्नात्वा वागीश्वरं समर्चय। सर्वेषामुन्नता विप्र वाक्सिद्धिस्ते भविष्यति[१६] ॥३२॥

माहात्म्यमेतत् कथितं मया ते[१७] श्रीरत्नचूडस्य विरूपनेत्र।
तुर्य्ये युगे स्थास्यति गूढरूपमस्मिन् ह्यधोलिङ्गमखाततोये ॥३३॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां रत्नचूडेश्वरमाहात्म्यं नाम चतुर्विंशत्यधिकशततमोऽध्यायः ॥१२४॥

---

त्यसै बेलामा पुष्पक विमान लिएर गाना, बजाना र उत्सवका साथ तुरुन्त शिवजीका दूतहरू यस ठाउँमा आए। यस तलाउमा शिवगणका रूपमा ती पिशाचरूप ब्राह्मणलाई अभिषेक गरेर उनलाई त्यसै यानमा तुरुन्त राखी शिवजीका गणहरूले शिवलोकमा लिएर गए। यस तलाउमा स्नान गरेर जसले रत्नचूडेश्वर भगवान्‌को वैशाखसङ्क्रान्तिका दिन पूजा गर्छ त्यसको पुण्यफल सुन। पहाडमा आरोहण गर्नाले मात्रै पनि साधकले तीनै जन्मदेखि गरेका पापबाट मुक्त हुन्छ। यस तलाउमा स्नान गर्‍यो भने तीन जन्ममा गरेका पापबाट मुक्ति पाउँछ।

साधकले यस लिङ्गको दर्शन मात्रै गर्‍यो भने पनि त्यो सम्पूर्ण पापबाट मुक्त भएर त्यसै यानमा चढेर शरीरैसित साक्षात् शिवलोकमा जान्छ ॥२६-३९॥

हे विरूपाक्ष! यहाँबाट तिमी अब एककोस टढा दक्षिणतिर रहेको पलासै पलासले भरिएको पर्वतमा जाऊ। त्यसैको फेदीमा वागीश्वर शिवजी रहनुभएको छ। त्यसपछि वीरतीर्थमा स्नान गरेर वागीश्वरको पूजा गर। त्यसका प्रभावले तिम्रो सबैभन्दा ठूलो वाक्सिद्धि हुनेछ ॥३०-३२॥

हे विरूपाक्ष ! मैले तिमीलाई रत्नचूडेश्वरको सबै माहात्म्य बताएँ। कलियुगमा यो लिङ्ग प्राकृतिक सरोवरको जलभित्र अदृश्य भएर रहनेछ ॥३३॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा रत्नचूडेश्वरको माहात्म्यनामक एकसय चौबीसौं अध्याय पूरा भयो।

---

१५. ते भविष्यति वाक्सिद्धिः सर्वेषामुन्नता द्विज, इति न.सं.पु.पाठः। १६. पर्वतारोहमात्रेण, इति न.सं.पु.पाठः।
१७. एतन्मया ते कथितं माहात्म्यम्, इति न.सं.पु.पाठः।

# पञ्चविंशत्यधिकशततमोऽध्यायः

वीरानदी–वागीश्वरयोर्महिमा

स्कन्द उवाच

रत्नह्रदे ततः स्नात्वा विरूपाक्षो घटोद्भव। सम्पूज्य रत्नचूडेशं तस्य[1] रत्नप्रभा तनुः ॥१॥
भूयोऽगमद्विरूपाक्षश्चागस्त्यमुनिना सह। यत्र वागीश्वरं लिङ्गं रत्नह्रदाद्रिशेखरे[2] ॥२॥
वीरनद्यां सुखं स्नात्वा वागीश्वरमपूपुजत्। तपःकृष्णे ह्यमावास्यां भक्तिभावेन चेतसा ॥३॥
तन्निशायां मुदा विप्रो विनिद्रः पूजको हरम्। पृच्छति स्म मुनिं भक्त्या तन्माहात्म्यं घटोद्भव ॥४॥

विरूपाक्ष उवाच

भगवन्मुनिशार्दूल मुक्तिज्ञानप्रदायक। भूयः श्रोतुमनाश्चाहं त्वत्तो भवामि[3] साम्प्रतम् ॥५॥
एतल्लिङ्गस्य माहात्म्यं वीरनद्यास्तथैव च। को मुक्तोऽत्र मुने पूर्वं तत्सर्वं मे वद प्रभो ॥६॥

नेमुनिरुवाच

आसीद्विप्र पुरा कश्चिद्वाग्नामा च मुनीश्वरः। सोऽत्राऽदर्शन्नदीं चेमां शैलावतरणीं[4] वराम् ॥७॥
वीरेण चेतसा सस्नौ तस्माद्वीरा नदी श्रुता। सम्पूज्य विधिवद्भक्त्या वीरकल्लोलिनीं द्विज ॥८॥
अत्र संस्थापितं भक्त्या तेन लिङ्गं यथाविधि[5]। श्रावणीपूर्णिमायां हि श्रवणर्क्षेण संयुजि ॥९॥
भक्तियुक्तस्ततो वाक्च पपाठ तन्मनुं मुदा[6]। शताब्दं व्याप्य वाग्विप्रो जजाप पूजयन् हरम् ॥१०॥
तत आविर्बभौ रुद्रश्चास्मिँल्लिङ्गे[7] सविग्रहः। श्रावणीपूर्णिमायां वै वरं दातुमुवाच ह ॥११॥

---

## अध्याय – १२५

वीरानदी र वागीश्वरको महिमा

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! त्यसपछि विरूपाक्षले रत्नसरोवरमा स्नान गरेर रत्नचूडेश्वर भगवान्‌को पूजा गरे। त्यसपछि उनको शरीर रत्नजस्तै कान्तिसम्पन्न भयो। फेरि विरूपाक्ष नेमुनिलाई साथमा लिएर जहाँ वागीश्वर लिङ्ग रहेको थियो, त्यसै रत्नदह रहेको पर्वतमा गए। माघकृष्ण औँसीका दिन वीरा नदीमा स्नान गरेर भक्तियुक्त चित्तले वागीश्वर भगवान्‌को पूजा गरे। हे अगस्त्य मुनि ! त्यसैको राति विरूपाक्षले जाग्राम बसेर शिवजीको पूजा गरिसकेपछि भक्तिपूर्वक त्यस तीर्थको माहात्म्य नेमुनिसित सोधे ॥१–४॥

विरूपाक्षले भने – हे मुनिश्रेष्ठ ! हजुर मुक्ति र ज्ञानका दाता हुनुहुन्छ। म अहिले हजुरबाट वीरानदी र वागीश्वर शिवलिङ्गको माहात्म्य सुन्न चाहन्छु। अघि यहाँ कसले मुक्ति पायो ? हे प्रभु ! त्यो सबै मलाई बताउनुहोस् ॥५–६॥

नेमुनिले भन्नुभयो – हे विरूपाक्ष ! अघि कुनै वाक् नाम भएका ऋषि थिए। तिनै ऋषिले पहाडबाट निस्कन लागेकी यी श्रेष्ठ नदीलाई देखे। वीरभावनाले उनले यस नदीमा स्नान गरे। वीरतरङ्ग भएकी यी नदीलाई भक्तिपूर्वक विधिवत् उनले पूजा गरे। त्यसैले यिनको नाम वीरानदी भयो। उनले श्रवण नक्षत्रले युक्त भएको श्रावणी पूर्णिमाको दिन यस लिङ्गलाई सभक्ति विधिपूर्वक यसै ठाउँमा स्थापना गरे। भक्तियुक्त भएर हर्षित हुँदै 'वाक्'नाम गरेका ब्राह्मणले सयवर्षसम्म स्तुति, पाठपूजा आदि गर्दै महादेवको मन्त्र जपे। त्यसपछि श्रावणपूर्णिमाको दिन शरीरै लिएर भगवान् शङ्कर प्रकट हुनुभयो र वर दिनका लागि भन्न लाग्नुभयो ॥७–११॥

---

१. रत्नचूडेश्वरं पूज्य, इति न.सं.पु.पाठः।
२. अस्मि भवति, इति न.सं.पु.पाठः।
३. अत्र चास्थापितो भक्त्या चैतल्लिङ्गं यथाविधि, इति न.सं.पु.पाठः।
४. तन्मनुं संपठन् मुदा, इति न.सं.पु.पाठः।
५. किंशुके, इति न.सं.पु.पाठः।
६. वीरावतरणीम्, इति न.सं.पु.पाठः।
७. रुद्रश्चैतल्लिङ्गे, इति न.सं.पु.पाठः।

रुद्र उवाच

भो भो वाग्मुनिशार्दूल स्थापितोऽहं त्वया यतः। तस्माद‌द्यादि ते नाम्ना लिङ्गमेतद् भविष्यति ॥१२॥
वदिष्यन्ति ततो लोका वागीश्वर इति शिवम्[८]। इमं देहं परित्यज्य मम लोकं गमिष्यसि ॥१३॥

नेमुनिरुवाच

इत्युक्त्वाऽन्तर्दधे रुद्रो वागृषये वरप्रदः। तदर्हणं समादाय पूर्णिमायां महानिशि ॥१४॥
ततो दशसमान्तेऽसौ पञ्चत्वं प्राप्तवान्मुनिः। हंसयानं समायातं कालेनाऽत्र विरूपदृक्[९] ॥१५॥
रुद्रयाने तमास्थाय निन्युः शिवपुरं गणाः। गीततालमृदङ्गानां नादैः कुसुमवर्षणैः ॥१६॥
स एव प्रमथश्रेष्ठोऽभवत्स वाङ्मुनीश्वरः। अद्यापि विचरन्नूनं रुद्रेण सह मोदते ॥१७॥
संस्नाय वीरनद्यां यो वागीश्वरं समर्चति। महापापैर्विनिर्मुक्तः शिवलोकं स गच्छति ॥१८॥
विरूपाक्ष ! सुसिद्धोऽसि निष्पापविग्रहो भवान्। भूयो गच्छ ह्यतो दूरे योजनार्द्धञ्च वारुणे ॥१९॥
दोलागिरिमहाशृङ्गे यत्र कीलेश्वरः शिवः[१०]।

वागीश्वरस्याऽऽर्य परं महत्त्वं[११] प्रोक्तं मया ते ह्यधुना द्विजैतत्।
भूयो हि वक्ष्यामि विरूपनेत्र ! चाऽन्यस्य तत्रैव शृणु प्रशंसाम् ॥२०॥

इति श्रीस्कन्दपुराणे हिमवतखण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां वीरानदीवागीश्वरयोर्माहात्म्यं नाम पञ्चविंशत्यधिकशततमोऽध्यायः ॥१२५॥

---

भगवान् शङ्करले भन्नुभयो – हे वाक् नाम गरेका मुनिश्रेष्ठ ! तिमीले मेरो स्थापना गर्‍यौ। त्यसैले आजदेखि यो लिङ्ग तिम्रै नामबाट प्रसिद्ध हुनेछ। मानिसहरूले यस लिङ्गलाई वागीश्वर भन्नेछन्। यो शरीर त्याग गरेपछि तिमी मेरो लोकमा जानेछौ ॥१२ –१३॥

नेमुनिले भन्नुभयो– यति भनेर पूर्णिमाको मध्यरातमा ती ऋषिले गरेको पूजालाई ग्रहण गरी 'वाक्'नाम गरेका ऋषिलाई वर दिन आउनुभएका भगवान् शङ्कर अन्तर्धान हुनुभयो। हे विरूपाक्ष ! दश वर्षपछि कालगतिले ती ब्राह्मणको प्राण गयो। त्यहाँ तिनलाई 'हंस'नाम गरेको विमान आयो। शिवजीका गणले त्यसै यानमा तिनलाई राखेर गीत, ताल र मादल बजाउँदै फूलको वर्षा गरेर शिवजीको लोकमा लगे ॥१४–१६॥

तिनै ब्राह्मण शिवजीको अनुचर तथा प्रमथगणका मुख्य भएर रहेका छन्। आज पनि भगवान् शङ्करका साथ घुम्दै आनन्दसित बसेका छन्। वीरा नदीमा स्नान गरेर जुन मानिसले वागीश्वर भगवान्‌को पूजा गर्छ त्यो सबै पापबाट मुक्त भएर शिवलोकमा जान्छ। हे विरूपाक्ष ! तिमी सिद्ध भएका छौ। तिम्रो शरीर पापबाट मुक्त भएको छ। फेरि तिमी यहाँबाट दुई कोस पश्चिममा रहेको दोलागिरिको टाकुरामा जाऊ। त्यहाँ कीलेश्वर महादेव बस्नुभएको छ ॥१७–१९½॥

हे आर्य ! मैले तिमीलाई वागीश्वरको माहात्म्य अहिले बताएँ। अब त्यहाँका अरू लिङ्गहरूको पनि माहात्म्य म बताउँछु, सुन ॥२०॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा रत्नचूडेश्वरको माहात्म्यनामक एकसय चौबीसौं अध्याय पूरा भयो।

---

८. श्रुतः, इति न.सं.पु.पाठः।
९. हंसयानेन चात्रैव कालवशाद्विरूपदृक्, इति न.सं.पु.पाठः।
१०. यत्रास्ते हि किलेश्वरः, इति न.सं.पु.पाठः।
११. माहात्म्यम्, इति न.सं.पु.पाठः।

# षड्विंशत्युत्तरशततमोऽध्यायः

## कीलेश्वरशिवलिङ्गमहिमा मुरदानववधश्च

### स्कन्द उवाच

भूयोऽगमद्विरूपाक्षः सार्द्धन्तेनर्षिणा मुने। तस्माद्वारुणदेशे च दोलाशिखरिशेखरे ॥१॥
यत्र विराजते रुद्रः सह तार्क्ष्येण विष्णुना। कीलेश्वरं महालिङ्गं योजनार्द्धे घटोद्भव ॥२॥
शङ्खह्रदे मुदा स्नात्वा विष्णुमपूपुजत्[1] हि सः। चैत्रसितद्वितीयायां भक्त्या पञ्चोपचारकैः ॥३॥
तपःसिततृतीयायां कीलेश्वरः समर्चितः। पप्रच्छ नेमुनिं रात्रौ तन्माहात्म्यं विरूपदृक् ॥४॥

### विरूपाक्ष उवाच

एतल्लिङ्गस्य माहात्म्यं विष्णोश्च नेमुने तथा। श्रोतुमिच्छाम्यहं भूयो त्वन्मुखाद् वद मे हि तत् ॥५॥
कथमेतौ समुद्भूतौ लिङ्गविष्णू कदा मुने[2]। केन लब्धः पुरैताभ्यां वरश्चैव मुनीश्वर ॥६॥

### नेमुनिरुवाच

एकार्णवे यदा भूमौ निःशेषे जङ्गमे द्विज। तदोद्भूतो महाशम्भुर्व्यादिदेश हि श्रीहरिम् ॥७॥
मत्पूर्वदिशि विष्णो त्वं तिष्ठ शैले निरन्तरम्। पूजयन्ति च लोकास्त्वां मद्वपुरिति हेतुतः ॥८॥
ततः प्रभृति चाऽऽस्ते वै विष्णुस्ताक्ष्र्येण वै समम्। शृणु वच्मि पुरा जातमस्य ल्लिङ्गस्य दर्शनम् ॥९॥
आसीत्पूर्वयुगे दैत्यो मुरनामा स काश्यप। महाबलो भराटेशे येन तप्तं पुरा तपः ॥१०॥
सहस्राब्दं भृशं व्याप्य चाऽलभत ततो वरम्। सुप्रभानगरे राज्यञ्चकार दानवैः सह ॥११॥
लब्धवरोऽसुरः क्रोधी नवलिङ्गेश्वरात्पुनः। त्रैलोक्यमजयद्युद्धे देवान् विद्राव्य सत्वरम् ॥१२॥

---

## अध्याय – १२६

### कीलेश्वर शिवलिङ्गको महिमा र मुरदानवको वध

कुमार स्वामीले भंन्नुभयो – हे अगस्त्य मुनि ! त्यसपछि विरूपाक्ष नेमुनिलाई साथमा लिएर त्यसभन्दा पश्चिमतिर रहेको दोलागिरिको शिखरमा जानुभयो। आधायोजन पर रहेको त्यस ठ्याकुरामा गरुडका साथमा रहनुभएका भगवान् विष्णुका साथ कीलेश्वर महादेव बस्नुभएको छ। विरूपाक्षले शङ्खदहमा आनन्दसित स्नान गरेर चैत्रशुक्ल द्वितीयाका दिन भक्तिपूर्वक पञ्चोपचारविधिले विष्णुको पूजा गरे। माघशुक्ल तृतीयाका दिन विरूपाक्षले कीलेश्वर भगवान्‌को अर्चना गरे, राति त्यस लिङ्गको माहात्म्य नेमुनिसित सोधे ॥१–४॥

विरूपाक्षले भने – हे नेमुनि ! यो लिङ्ग र विष्णुको माहात्म्यको बारेमा म सुन्न चाहन्छु। हे नेमुनि ! यो लिङ्ग र विष्णुको उत्पत्ति कसरी भयो ? यिनीहरूबाट कसले के वर पायो ? मलाई फेरि त्यो सबै बताइदिनुहोस् ॥५–६॥

नेमुनिले भन्नुभयो – पृथ्वीमा समुद्रबाहेक केही नभएपछि सम्पूर्ण जङ्गम, प्राणीहरू र समुद्र निःशेष भएपछि अद्भुत अवतार लिएका महाशम्भुले विष्णुलाई भन्नुभयो। हे विष्णु ! तपाईं मभन्दा पूर्वपट्टि सधैं बस्नुहोस्। मेरो शरीर हो भन्ने ठानेर दुनियाँले तपाईंको पनि पूजा गर्नेछन्। त्यस समयदेखि भगवान् विष्णु गरुडका साथ त्यहाँ बस्नुभएको छ। यस लिङ्गको उत्पत्तिका बारेमा अघि भएको घटना बताउँछु, सुन ॥७–९॥

अघि मुरनाम गरेको अत्यन्त बलवान् दैत्य थियो। काश्यप गोत्रमा जन्मिएको त्यस दैत्यले भराटेश्वरको ठूलो कठिन तपस्या गऱ्यो। हजार वर्षसम्म तपस्या गरेपछि उसले वर पायो। अनि सुप्रभा नाम गरेको शहरमा गएर दानवहरूका साथ त्यसले राज्य गऱ्यो। नयाँ लिङ्गका रूपमा प्रकट हुनुभएको भराटेश्वरको अनुग्रहले गर्दा वर पाएर रिसाहा त्यस दैत्यले देवताहरूसँग युद्ध गऱ्यो र उनीहरूलाई भगाएर तुरुन्त तीनै लोकमाथि विजय प्राप्त गऱ्यो ॥१०–१२॥

---

१. विष्णुमभ्यर्चितः, इति न.सं.पु.पाठः। २. कथमेतत्मसुद्भूतं लिङ्गं विष्णुश्च नेमुने, इति न.सं.पु.पाठः।

अत्राययुः सुराः स्वर्गाद्विष्णोश्च शरणं द्विज । रक्ष रक्ष महाविष्णो तद्भयाच्छरणागताः ॥१३॥
मुरः कश्यपपुत्रोऽसौ चाऽत्राऽगमत्तदा पुनः । देवानन्वेषयन् स्वर्गाद्योद्धुं तैः सहसा समम् ॥१४॥
ददृशुः तं सुराश्चाऽत्र दैत्यसैन्यैः समावृतम् । अमर्षैः पूरितं भीमं प्रोद्यच्छस्त्रास्त्रयानगम् ॥१५॥
ततो भयातुरा देवा विष्णुञ्च तुष्टुवुस्तदा । रक्ष रक्षाऽद्य नो विष्णो शत्रुदानवपापतः ॥१६॥
श्रुत्वैतद्वचनं विष्णुर्देवानां कम्पितोदितम् । व्याजहार वचस्तेभ्यो मामेति भीयतां सुराः ॥१७॥
इत्युक्त्वा त्वरितं विष्णुस्तार्क्ष्यं समारुरोह सः । धनुः शार्ङ्गं[३] समादाय सशरञ्च सुदर्शनम् ॥१८॥
अस्माद्विनिर्ययौ शीघ्रं देवसैन्यैः समं द्विज । वाद्यञ्चक्रुः सुरास्तीव्रं भेरीशङ्खमृदङ्गकैः ॥१९॥
ददृशुर्दानवा देवान् विष्णुपुरोगतान्पुनः । प्रणेदुः सिंहनादञ्च नानावाद्यैः समं भृशम् ॥२०॥
ववृषुः शरवर्षाणि देवसैन्येषु दानवाः । अत्यरुन्धन् गिरिमभ्रं धारया श्रावणे यथा ॥२१॥
चिक्षिपुर्देवसैन्येषु शस्त्रास्त्राणि च दानवाः । खट्वाङ्गप्राशशूलानि चक्रपरिघमुद्गरान् ॥२२॥
देवाश्च स्नापयामासुः[४] शस्त्रास्त्रवर्षणान्भृशम् । उद्दिश्य दानवान्विप्र मेघधारेव मेदिनीम् ॥२३॥
अन्धीभूता दिशाश्चाऽत्र मिथः शस्त्रास्त्रयोजनात् । शस्त्रास्त्रपिञ्जरीभूताः संवर्त्तके यथा जगत् ॥२४॥
विरेजे गगनञ्चाऽत्र तत आयोधनेऽर्चिभिः । शस्त्रास्त्रघर्षणोद्भूतैः प्रलये जगतामिव ॥२५॥
अभून्नादस्तदा युद्धे देवासुरभयङ्करः । हस्तिनां वाजिनाञ्चैव नेमीनां ह्रेषितोद्भवः[५] ॥२६॥
हाहाकारोऽभवद् भूयो वीराणां वेपथूद्भवः । मिथोऽस्त्रास्त्रैः प्रहारेषु प्रहरञ्छस्त्रजार्चिभिः[६] ॥२७॥

---

स्वर्गबाट ती देवताहरू यहाँ आए, विष्णुको शरणमा परे । देवताहरूले हे महाविष्णु ! दैत्यको डरले हामी तपाईंको शरणमा आएका छौं, रक्षा गर्नुहोस् भने ॥१३॥ त्यो दैत्य कश्यपको छोरो थियो । ती देवताहरूसँग युद्ध गर्न भनेर उनीहरूलाई खोज्दै स्वर्गबाट राक्षसहरूका साथ अचानक त्यो त्यहाँ आइपुग्यो ॥१४॥ रीसले चूर भएको, विभिन्न शस्त्र–अस्त्र हातमा लिएर यानमा बसेको डरलाग्दो दैत्यलाई देवताहरूले दैत्यका फौजका साथमा देखे ॥१५॥ त्यसपछि डरले आत्तिएर देवताहरूले विष्णुको स्तुति गरे । हे विष्णु ! आज शत्रुरूप दानवरूपी पापबाट हाम्रो रक्षा गर्नुहोस्, रक्षा गर्नुहोस् ॥१६॥

जिउ कमाउन थालेका देवताहरूको यो भनाइ सुनेर विष्णुले देवताहरूलाई भन्नुभयो – हे देवता हो ! नडराओ, नडराओ ॥१७॥ यति भनेर बाण सहितको शार्ङ्ग धनु र सुदर्शन चक्र लिएर भगवान् विष्णु तुरुन्त गरुडमाथि सवार हुनुभयो ॥१८॥ त्यसपछि देवताहरूको सेना लिएर भगवान् विष्णु निस्कनुभयो । देवताहरूले शङ्ख, मादल र कर्णालको बाजा खूबसित बजाए ॥१९॥ विष्णुलाई अगाडि लगाएर आउन लागेका देवताहरूलाई दानवहरूले देखे । सिंहको जस्तो गर्जन गरे, विभिन्न किसिमका बाजाहरू खूब बजाए ॥२०॥

श्रावणमहिनामा मेघले पानी बर्साएर बाटो बन्द गरेझैं दानवहरूले देवताको सेनामाथि निकै नै बाणवर्षा गरेर बाटो रोके । देवताहरूको सेनामाथि दानवहरूले शस्त्र र अस्त्रको वर्षा गरे । त्यसैगरी खट्वाङ्ग, पाश, त्रिशूल, चक्र, घुएँत्रो र मुङ्ग्रो बर्साए । देवताहरूले पनि ती दैत्यहरूलाई ताकेर आकाशबाट पृथ्वीमा पानी बर्सेझैं अनेक किसिमका शस्त्र र अस्त्र बर्साउन थाले ॥२१–२३॥

देवताहरूले पनि ती दानवलाई ताकेर आकाशबाट संवर्तक मेघले पृथ्वीमा पानी बर्साएजस्तै गरी अनेक किसिमका शस्त्र र अस्त्र बर्साउन थाले । दैत्यपक्ष र देवतापक्षका शस्त्र र अस्त्रको संघर्षले गर्दा आकाश नै प्रलयकालीन संसारजस्तै नदेखिने भयो । देवता र राक्षसको युद्धमा उनीहरूका बीच डरलाग्दो आवाज आयो । हात्ती, घोडा र रथबाट उत्पन्न भएको शब्द अत्यन्त भयङ्कर थियो । फेरि वीरहरूको कम्पनबाट उत्पन्न हाहाकार मच्चियो । वीरहरूले धारिला शस्त्रहरूद्वारा परस्पर हानाहान गरे ॥२४–२७॥

---

३. आसीत्पूर्वयुगे दैत्यो मुरनामा स काश्यप । महाबलो भराटेशे येन तप्तं पुरा तपः तीव्रं भराटेशे स काश्यपः ।
४. देवाश्चाप्यसृजन्भूयः, इति न.सं.पु.पाठः ।
५. अभून्नाद तदा युद्धे देवासुरभयङ्करम् । हस्तिनां वाजिनाञ्चैव नेमिनां ह्रेषितोद्भवम्, इति न.सं.पु.पाठः ।
६. हाहाकारमभूद् भूयो वीराणां वेपथूद्भवम्, इति न.सं.पु.पाठः ।

जघान दानवान्विष्णुश्चक्रेणैव सहस्रशः। वज्रेणैव तथा शक्रो जघ्नुर्दिक्पतयोऽपि तान् ॥२८॥
अधूनोदसुरान् वायुः[७] शस्त्रास्त्रपञ्जरक्षणात्। वेगेनापातयच्छैले कोटिदैत्यान् जघान च ॥२९॥
कुबेरो गदया दैत्यान् कोटिकोटिं जघान च। ईशानश्च तथा शक्रः कोटिकोटीन् तथा विधुः ॥३०॥
दहनः स्वार्चिर्भिर्दैत्यान् कालो दण्डाददण्डयत्[८]। नखायुधेन नैर्ऋत्यः सहस्रशो जघान च ॥३१॥
तार्क्ष्यो हि पक्षपातेन जघान तान् सहस्रशः। नखैश्च चञ्चुनाऽजस्रमुद्विदार्य्य कलेवरम् ॥३२॥
ससृजुरग्निवृष्टिन्ते दैत्यास्तार्क्ष्योपरि द्रुतम्। शिलावृष्टिं द्रुमान् भूयः पांसुवृष्टिमितस्ततः ॥३३॥
ततस्तार्क्ष्यो रुषाविष्टः प्रययौ त्वरितं द्विज। वाग्वती मिलिता यत्र सुन्दरीजलधारया[९] ॥३४॥
आदाय तज्जलं तार्क्ष्यो मुखेऽद्रिशेखरान्नखैः। अत्राऽऽगत्य द्रुतं तत्तद् ववर्ष दानवोपरि ॥३५॥
तच्छिलावर्षणाघातैः पेतुर्दैत्याः समन्ततः। पक्षघातैर्नखैस्तोयैरसह्यैश्चञ्चूदंशनैः[१०] ॥३६॥
ततो मुरो रुषाविष्टश्चाभिद्रुत्यामरान्पुरः। ससर्ज बाणवृष्टिञ्च सर्वदेवोपरि ध्रुवम् ॥३७॥
अप्रेषयन्मुरो दूतं कुम्भोदरञ्च विष्णवे। देवासुरसमक्षे स युद्धे च लोमहर्षणे ॥३८॥

मुर उवाच

भो कुम्भोदर ! गच्छाशु विष्णोस्त्वमन्तिकं खलु। यद्वक्तव्यं त्वया तस्मै तत्त्वं शृणु सुमन्त्रवित् ॥३९॥
यदिच्छसि सुखं विष्णो ! जीवितुमिह वै चिरम्। देवलोकैस्तथा सार्द्धं लक्ष्मीं प्रेषय मेऽन्तिकम् ॥४०॥
यदि नो प्रेषयेस्तां त्वं सावधानतया शृणु[११]। सान्वयं त्वां हनिष्यामि ततः प्राप्स्यामि तां ध्रुवम् ॥४१॥
योग्यं योग्येन वै ग्राह्यमयोग्ये शोभते न तत्। इत्युक्त्वा त्वरितं तस्मै कुम्भोदर ! समाव्रज ॥४२॥

---

विष्णुले हजारौं राक्षसहरूलाई चक्रद्वारा नै हत्या गर्नुभयो। इन्द्रले वज्रले प्रहार गरे। त्यस्तै अरू दिक्पालहरूले पनि आ–आफ्ना शस्त्रहरू प्रहार गरे। वायुले दैत्यहरूलाई शस्त्रास्त्रको साथै उडाएर माथि लगे। त्यहाँबाट वेगसित तल खस्दा पर्वतमा परेर करोडौं दैत्य मारिए। कुबेरले कराडौं दैत्यलाई मारे। त्यस्तै ईशान, इन्द्र र चन्द्रमाले पनि करोडौं करोड दैत्य मारे। अग्निले आफ्नो ज्वालाले दैत्यहरूमाथि प्रहार गरे। कालले लठ्ठीले हिर्काए। निर्ऋतिले आफ्ना नङ्ग्राले हजारौं दैत्यहरूको विनाश गरे ॥२८–३१॥

गरुडले हजारौं ती दैत्यलाई पखेटाले हाने, नङ्ग्राले उत्तिकै नाश गरे, चुच्चाले शरीरलाई छिया–छिया पारेर धेरै दैत्य सिध्याए। दैत्यले गरुडमाथि चारैतिरबाट अग्निको वर्षा गरे, शिला बर्साए, धूलो बर्साए र रुखहरू पनि वर्साए। त्यसपछि रीसले चूर हुँदै गरुड जहाँ वाग्मती नदी सुन्दरी नदीको धाराले युक्त भएर बगेकी थिइन्, त्यसै ठाउँमा दौडिएर गए। गरुडले वाग्मतीको जल पिए, नङ्ग्राले पहाडका शिखरहरू ल्याए र ती दैत्यहरूमाथि वर्षा गरे। शिलाको वर्षा, पखेटाको हिर्काइ, नङ्ग्राको झम्टइ, चुच्चाको ठुँगाइ र जलवर्षाको पीडाले गर्दा दैत्यहरू असह्य भएर चारैतिर पछारिए ॥३२–३६॥

त्यसपछि बाण बर्साउन सिपालु 'मुर'नामक दैत्य सबै देवताहरूको सामु दौडिएर आयो र बाण बर्साउन थाल्यो। देवता र दैत्यहरूको बीचमा भएको डरलाग्दो युद्धमा मुरदैत्यले कुम्भोदर राक्षसलाई दूत बनाएर तुरुन्तै विष्णु भएको ठाउँमा पठायो ॥३७–३८॥

मुरदैत्यले भन्यो – हे कुम्भोदर ! तैं तुरुन्त विष्णुको नजिकै जा। तैं मन्त्रणा गर्न सिपालु छस्। त्यहाँ गएर तैंले विष्णुलाई जे भन्नुपर्छ त्यो कुरा सुन्। "हे विष्णु ! तिमी यदि सुखसित धेरै समयसम्म बाँच्न चाहन्छौ भने तिमीले स्वर्गका देवताहरू र लक्ष्मीलाई मेरो समीपमा पठाइदेऊ। यदि तुरुन्त लक्ष्मीलाई म भएको ठाउँमा पठाएनौ भने वंशसहित तिमीलाई मार्नेछु र लक्ष्मीलाई अवश्य आफ्नो हात लगाउनेछु। योग्यवस्तु योग्यलाई दिनुपर्छ, अयोग्यमा त्यो वस्तु सुहाउँदैन।" हे कुम्भोदर ! यति कुरा चाँडै विष्णुलाई भनेर यहाँ आउने काम गर् ॥३९–४२॥

---

७. प्राद्रुयतासुरान्वायुः, इति न.सं.पु.पाठः।
८. दण्डेन चाप्यति, इति न.सं.पु.पाठः।
९. सौन्दर्यङ्गतधारया, इति न.सं.पु.पाठः।
१०. चञ्चूदष्टैरसह्यतः, इति न.सं.पु.पाठः।
११. नोचेद्धि त्वरितं मूढ तां प्रेषणं ममान्तिके, इति न.सं.पु.पाठः।

नेमुनिरुवाच

इत्यादेशं समादाय कुम्भोदरस्त्वरान्वितः। श्रीविष्णोश्चाऽन्तिकं गत्वा विष्णवे तदुवाच हि ॥४३॥

कुम्भोदर उवाच

विष्णो त्वदन्तिकञ्चाऽहं मुरेण प्रेषितोऽधुना। कार्यार्थन्तस्य दैत्यस्य सम्प्राप्तः सामदानयोः[१२] ॥४४॥

लक्ष्मीं प्रेषय तस्मै त्वं वधूत्वेन हि साम्प्रतम्। यावद्धतास्त्वया दैत्या स तदागांसि वै क्षमेत् ॥४५॥

नो चेच्छृणु यदुक्तं ते केशव ! तेन मां प्रति। सान्वयं त्वां ध्रुवं हत्वा लक्ष्मीं नेष्यामि मद्गृहम् ॥४६॥

नेमुनिरुवाच

इत्याकर्ण्य वचो विष्णुस्तार्क्ष्यं समारुरोह च। शङ्खचक्रगदाचापानुद्यम्य प्रययौ युधि ॥४७॥

अर्बुदबाणवृष्टिञ्च मुरासुरोपरि ध्रुवम्। विष्णुश्चकार शश्वच्च शार्ङ्गस्य निनदै रुषा ॥४८॥

टङ्कारनिनदैर्बाणैः स्वर्णपुङ्खाभिधानकैः। रराज द्यौर्निशीवाऽऽर्य महासारैः क्षये यथा ॥४९॥

ततः पाशुपतास्त्रञ्च मुरश्चिक्षेप सत्वरम्। विष्णोरायुधमुद्दिश्य पशुपतिः पशूनिव ॥५०॥

चापचक्रगदाशङ्खाः[१३] पाशुपतप्रहारतः। विष्णोर्हस्तात्तदा विप्र ! चाऽपतन् भुवि सत्वरम् ॥५१॥

रुषाविष्टस्तदा विष्णुः सुदर्शनं समाददे। हन्तुमुद्यतवन्तञ्च भीमो यथा जगत्क्षये ॥५२॥

तं हन्तुमुद्यतं विष्णुं ददर्श पशुपेश्वरः। न्यषेधयत्तदा विष्णुं गिरा व्योमजयैव हि ॥५३॥

अशरीर उवाच

मा मा विष्णो ! प्रहन्तव्यो भवताऽयं मुरः कदा। देवासुरैरवध्यत्वमस्मै दत्तो वरो मया ॥५४॥

विशेषेण न हन्तव्यः पुम्भिर्विष्णो कदापि च। अस्य हन्त्री महादेवी चाऽस्ति मम प्रिया हरे ॥५५॥

---

नेमुनिले भन्नुभयो – यति आदेश लिएर कुम्भोदर तुरुन्त विष्णुको नजिकै गयो र त्यो सबै कुरा विष्णुलाई भन्न लाग्यो ॥४३॥

कुम्भोदरले भन्यो – मुरदैत्यले पहिले साम, दाम प्रयोग गर्ने दृष्टिकोणले मलाई आफ्नो कामका निमित्त यहाँ पठाएका हुँदा म तिमीकहाँ आएको छु। तिमी तुरुन्त लक्ष्मीलाई मुरदैत्यकी पत्नी तुल्याउनका लागि दैत्यकहाँ पठाऊ। त्यसो गर्‍यौ भने तिमीले जति पनि दैत्यहरूलाई मारेर जे जति अपराध गर्‍यौ, उहाँले सबै क्षमा गर्नुहुनेछ, होइन भने वंशसहित तिम्रो नाश गरेर लक्ष्मीलाई मेरो घरमा ल्याउँछु भनेर उहाँले मलाई भन्नुभएको छ ॥४४–४६॥

नेमुनिले भन्नुभयो – यो कुरा सुन्नेबित्तिकै भगवान् विष्णु शङ्ख, चक्र, गदा र धनुष उभ्याएर गरुडमाथि चढी युद्धका लागि प्रस्थान गर्नुभयो। एकाएक रीसले क्रुद्ध भएका विष्णुले शार्ङ्गनामक धनुको टङ्कार गर्दै सिंहजस्तै गर्जना गरी मुरदैत्यमाथि दशौं हजार बाण प्रहार गर्नुभयो। ठूलो आवाजका साथ स्वर्णपुङ्ख नाम गरेका बाणहरूको वर्षाले प्रलयकालको रातमा जस्तै आकाश सुशोभित देखियो। त्यसपछि भगवान् पशुपतिले अज्ञानी दैत्यपशुमाथि पाशुपतास्त्रले प्रहार गरेझैं मुरदैत्यले पनि विष्णुका शस्त्रलाई लक्ष्य गरेर पाशुपतास्त्र प्रहार गर्‍यो ॥४७–५०॥

हे विरूपाक्ष ! पाशुपतास्त्रको प्रहारले गर्दा शङ्ख, चक्र, गदा र धनुष विष्णुको हातबाट तुरुन्त भुइँमा खसे। रिसाएका विष्णुले प्रलयकालका रुद्रजस्तै डरलाग्दा भएर त्यस दैत्यलाई मार्नका लागि सुदर्शन चक्र समात्नुभयो। त्यस दैत्यलाई मार्न विष्णु जाइलागेको देखेर महादेवले स्वयं विष्णुलाई आकाशवाणीद्वारा रोक्नुभयो ॥५१–५३॥

आकाशवाणीले भनिन् – हे विष्णु ! तपाईं यस मुरदैत्यलाई नमार्नुहोस्। मैले यसलाई देवता र राक्षसले मार्न सक्दैनन् भनेर वर दिएको छु। हे विष्णु ! खास गरेर पुरुषजातिले यसलाई कहिल्यै पनि मार्न सक्दैनन्। मेरी पत्नी महादेवीले मात्र यसलाई मार्नेछिन् ॥५४–५५॥

---

१२. सामदानस्य हि ततः, इति न.सं.पु.पाठः।

१३. शङ्खचक्रगदाचापा, इति न.सं.पु.पाठः।

नेमुनिरुवाच

इत्युक्त्वाऽन्तर्दधे रुद्रो विष्णुरत्राऽगमद् ध्रुवम् । मुरोऽप्याश्वभिदुद्राव चैतत्पर्वतशेखरम् ॥५६॥

दोलाशैलं दृढं दोर्भ्यां समालिङ्ग्य मुरोऽसुरः । प्रान्दोलयद् भृशं विप्र पाटयितु[१४] रुषाऽन्वितः ॥५७॥

शैलकम्पं हरिः प्रेक्ष्य सस्मार पशुपेश्वरम् । एतल्लिङ्गं समुद्भूतं तत्क्षणाद्विष्णुचिन्तने ॥५८॥

राधासितचतुर्दश्या महानिशि मुदा हरिः । पूजति स्म तदा लिङ्गमेतत्पञ्चोपचारकैः ॥५९॥

तत्पूजनात्तुतोषेशस्स्तम्भहेतुसमुद्भवः । व्याचष्ट वचनं शम्भुर्वरदानाय विष्णवे ॥६०॥

कीलेश्वर उवाच

एतद्गिरिं समुद्धर्त्तुं स्तम्भत्वेनोद्भवाम्यहम् । दृप्तो दानवराजश्च गिरिमुत्खातुमुद्यतः[१५] ॥६१॥

स्वशीर्षमसिना विष्णो प्रच्छेद्याराधयेश्वरीम् । हनिष्यति ततः सा तं जगद्रक्षय साम्प्रतम् ॥६२॥

नेमुनिरुवाच

विष्णुः सद्यः स्वखड्गेन चाऽच्छिनत् स्वशिरः द्रुतम्[१६] । मायया मोहितुं दैत्यं रणे मुरं तदा द्विज ॥६३॥

आराधयत्ततो देवीं जगद्रक्षकः केशवः । रुद्रवाक्यामृतं मत्वा नत्वा लिङ्गं हि शीर्षतः[१७] ॥६४॥

अत्रागत्य मुरोऽप्याशु चाऽदर्शद्विष्णुमव्ययम् । सद्यश्छिन्नञ्च मूर्द्धानमसृगुक्षितविग्रहम् ॥६५॥

तार्क्ष्योपरि स्थितं देवं शङ्खचक्रगदाब्जकम् । प्रोद्यतञ्च चतुर्हस्तैश्छिन्नशीर्षञ्जगद्विभुम् ॥६६॥

पुनर्हन्तुमियेषाऽसौ मुरस्ताक्ष्यञ्च पत्त्रिभिः । उद्वहन्तञ्च पृष्ठेन छिन्नशीर्षं हरिन्ततः ॥६७॥

---

नेमुनिले भन्नुभयो – यति भनेर भगवान् शङ्कर अन्तर्धान हुनुभयो । भगवान् विष्णु शिव बसेको ठाउँमा जानुभयो । मुरदैत्य पनि दौडिएर यसै पर्वतको शिखरमा आयो । रिसाएको मुरदैत्यले दुई हातले त्यस दोलागिरिलाई अँगालो हालेर उखेल्नका लागि खूबसित हल्लायो । मुरदैत्यले पर्वत हल्लाएको देखेर विष्णुले भगवान् शङ्करको स्मरण गर्नुभयो । विष्णुले स्मरण गर्नासाथ यो कीलेश्वर नामक लिङ्ग तुरुन्त प्रादुर्भाव भयो । वैशाखशुक्ल चतुर्दशीका दिन आधारातमा विष्णुले प्रसन्न भएर पञ्चोपचारविधिले यस लिङ्गको पूजा गर्नुभयो । त्यस पूजाबाट भगवान् शङ्कर प्रसन्न हुनुभयो र स्तम्भबाट प्रकट भएर विष्णुलाई वरदान दिनका लागि भन्न लाग्नुभयो ॥५६–६०॥

कीलेश्वरले भन्नुभयो – अभिमानी त्यो दैत्य पर्वत उखेल्न कस्सिएको हुँदा पर्वतको उद्धार गर्न म खम्बा भएर पैदा भएको छु । हे विष्णु ! तपाईंले आफ्नो शिरलाई तरवारले काटेर ईश्वरीको आराधना गर्नुहोस् । तिनै ईश्वरीले त्यस दैत्यलाई मार्नेछिन् । यसरी तपाईंले संसारको रक्षा गर्नुहोस् ॥६१–६२॥

नेमुनिले भन्नुभयो – विरूपाक्ष ! महादेवको आज्ञा अनुसार दैत्यलाई मोहमा पार्न आफ्नो शिर छेदन गरेर त्यसै पर्वतको शिखरमा विष्णुले भगवतीको आराधना गर्नुभयो । त्यसपछि रुद्रवाक्यलाई अमृत सम्झिएर त्यहाँ रहेको शिवलिङ्गलाई शिरले नमस्कार गरी संसारका रक्षक भगवान् विष्णुले भगवतीको आराधना गर्नुभएको थियो । यहाँ आएर मुरदैत्यले पनि रक्ताम्य शरीर भएका र टाउको छिनेका अव्यय विष्णुलाई देख्यो । संसारका स्वामी भगवान् विष्णु गरुडमाथि बस्नुभएको थियो । शङ्ख, चक्र, गदा र कमल उहाँका हातमा थिए । उहाँका चारहात थिए, शिर काटिएको थियो । त्यसपछि मुरदैत्यले टाउको काटिएका विष्णुलाई पिठ्यूँमा बोकेर बसेको गरुडलाई बाण हानेर मार्ने विचार गऱ्यो ॥६३–६७॥

---

१४. उत्पाट्यितुम्, इति न.सं.पु.पाठः ।

१५. दृप्तेनासुरराजेन उत्खातुमुद्यतो गिरिम्, इति न.सं.पु.पाठः ।

१६. चाच्छिनच्छिरसं स्वकम्, इति न.सं.पु.पाठः ।

१७. लिङ्गं मूर्ध्ना नमस्कृतः, इति न.सं.पु.पाठः ।

एकादश्याञ्च शुक्लायां वरदेनाऽभिप्रेरिता[१८] । विनिर्ययौ महादेवी तदङ्गसम्भवा तदा ॥६८॥
चकार भस्मसाद्दैत्यं तृतीयेक्षणवह्निना । प्रोद्यद्ब्रह्मास्त्रमार्यायाः ज्वलत्क्रोधानलेन च[१९] ॥६९॥
भस्मीकृते मुरे दैत्ये देवी तत्र विराजते । मातृकाश्च पुनर्जघ्नुरवशेषांश्च दानवान् ॥७०॥
साधुसाध्विति कृत्वास्यैर्ववृषुः पुष्पसन्ततिम् । प्रापूजन्नृषयः सिद्धा जगुर्गन्धर्वकिन्नराः ॥७१॥
विष्णुस्तुष्टाव तां देवीं प्रणम्य द्वादशीदिने । सम्पूज्य विधिवद्भक्त्या बद्ध्वाऽञ्जलिं परिक्रमन् ॥७२॥
समुद्भूतं ततो लिङ्गं कीलेश्वरमिति श्रुतम्[२०] । तस्माद्दोलागिरिः प्रोक्तो मुरेण दोलितो यतः ॥७३॥

भूयश्च वक्ष्यामि विरूपनेत्र ! माहात्म्यमीशस्य पुनश्च विष्णोः ।
मुक्तो हि कश्चिन्मनुजो पुराऽऽर्य ! चाऽत्रैव सम्यग् शृणु सावधानम् ॥७४॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां कीलेश्वरमाहात्म्ये मुरवधो नाम षड्विंशत्युत्तरशततमोऽध्यायः ॥१२६॥

---

शुक्ल एकादशीको दिन महादेवको वरदान पाएर विष्णुको त्यसै शरीरबाट महादेवी प्रकट हुनुभयो । भगवतीले रीसले आँखा चिम्लिएर ब्रह्मास्त्र उठाउँदै जाइलाग्ने दैत्यलाई त्यसै ठाउँमा भस्म गर्नुभयो । मुर दैत्यलाई भस्म गरेपछि भगवती त्यसै ठाउँमा बस्नुभयो । मातृकाहरूले बाँकी रहेका सबै दैत्यहरूलाई विनाश गर्नुभयो । भगवतीले राम्रो गर्नुभयो भनेर सिद्धहरूले फूलको वर्षा गरे र पूजा गरे, गन्धर्व र किन्नरहरूले गाना गाए ॥६८-७१॥

द्वादशीका दिन विष्णु खुसी हुनुभयो र ईश्वरीको प्रदक्षिणा गर्दै हात जोडेर नमस्कार गर्नुभयो । अनि पूजा गर्नुभयो । यसरी यो लिङ्ग प्रकट भएको हुँदा यसको नाम कीलेश्वर रह्यो । दैत्यले हल्लाएको हुँदा यस पर्वतको नाम दोलागिरि रहेको हो ॥७२-७३॥

हे विरूपाक्ष ! तिमीलाई महादेव र विष्णुको माहात्म्य अरू पनि बताउँछु । यसै ठाउँमा कुनै मानिस अघि मुक्त भएको थियो, हे विरूपाक्ष ! ध्यान दिएर राम्रोसित सुन ॥७४॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा कीलेश्वरको माहात्म्यमा मुरदैत्यको वधनामक एकसय छब्बीसौं अध्याय पूरा भयो ।

---

१८. वरदाद्यस्य प्रेरिता, इति न.सं.पु.पाठः । १९. क्रोधोन्मील्येक्षणार्चिषा, इति न.सं.पु.पाठः ।
२०. तस्मात्समुद्भवं लिङ्गं कीलेश्वर इति श्रुतः, इति न.सं.पु.पाठः ।

# सप्तविंशत्युत्तरशततमोऽध्यायः

## कीलेश्वरशिवलिङ्गस्याप्रतिमं महत्त्वम्

नेमुनिरुवाच

आसीत्कश्चिद् द्विजश्रेष्ठो विष्णुभद्र इति श्रुतः । मरुदेशे समुत्पन्नः सर्वशास्त्रविशारदः ॥१॥
विरक्तो निर्गतो देशाद् द्वारवत्यां जगाम सः । मनो दधे तनुं मोक्तुं सांख्ययोगेन तत्र वै ॥२॥
व्यादिदेश हरिस्तस्मै प्रसुप्ताय विरूपदृक् । मा मा द्विजात्र मोक्तव्यं त्वच्छरीरं कदाचन ॥३॥
गच्छ हिमालयस्याधस्तत्सानुशेखरे द्विज । दोलाद्रिनाम्नि कूटे वै तत्र वसाम्यहं चिरम् ॥४॥
मत्प्रदर्शनमात्रेण यः कश्चित्तत्र मानुषः । गच्छति मम लोकं वै योगं विना सविग्रहः ॥५॥
प्रातरुत्थाय विप्रोऽसौ द्वारवत्या विनिर्ययौ । मत्वा तथ्यं हरेर्वाक्यं विष्णुं प्रणम्य दण्डवत् ॥६॥
अत्रैव प्राप्तवान् विप्रो मुमुक्षुर्द्विज ! निर्जनः । शङ्खह्रदे मुदा स्नात्वा समारोहमिमं गिरिम्[1] ॥७॥
द्वादश्यां माघशुक्लायां तिथौ च बुधवासरे[2] । ददर्शासौ[3] द्विजो विष्णुं गरुडोपरि राजितम् ॥८॥
संपूज्य विधिवद् भक्त्या वन्यपुष्पैश्च तज्जलैः । नमो नारायणायेति ॐकारपूर्वकं पठन् ॥९॥
प्रजप्य तन्मनुं लक्षं परिक्रमन् ननाम सः । प्राणायामं महायोगं तदग्रे कृतवान्द्विजः ॥१०॥
लयमाप ततो[4] विप्रो विष्णौ ज्योतिर्मये परे । यथा दीपशिखायाञ्च प्रदीप इव वै द्विज ॥११॥
भूयः शृणु विरूपाक्ष ! चैतल्लिङ्गप्रशंसनम् । विमुक्तः किन्नरः कश्चित्कालान्तेऽस्य प्रसादतः ॥१२॥
आसीदश्वमुखो विप्र ! सुग्रीवो नाम विश्रुतः । सुगीतैर्विचरन् शैले चात्रैव प्राप्तवान्पुरा ॥१३॥

---

## अध्याय – १२७

### कीलेश्वर शिवलिङ्गको अनुपम महिमा

नेमुनिले भन्नुभयो – मरुदेशमा पैदा भएका, शास्त्र पढेका विष्णुभद्र नाम गरेका कुनै ब्राह्मण थिए ॥१॥ विरक्त भएर घरबाट निस्किएका ती ब्राह्मणले द्वारावतीमा गई साङ्ख्यद्वारा प्रतिपादित योगविधि अनुसार शरीरत्याग गरेर मुक्त हुने विचार गरे। हे विरूपाक्ष ! सुतेका ती ब्राह्मणलाई सपनामा विष्णुले भन्नुभयो – हे ब्राह्मण ! तिमीले यहाँ कदापि शरीरत्याग गर्नुहुँदैन ॥१–३॥

हिमालयभन्दा तल दोलाद्रि नाम गरेको पर्वतको थुम्को छ। त्यसै ठाउँमा धेरै अघिदेखि म बसिरहेको छु। हे ब्राह्मण ! तिमी त्यहाँ जाऊ। त्यहाँ गएर मेरो दर्शन मात्रै गर्ने मानिस योगसाधना नै नगरीकन शरीरैसित मेरो लोकमा जान पाउँछ। भगवान् विष्णुको बोलीलाई सत्य ठानेर उहाँलाई दण्डवत् प्रणाम गरी ती ब्राह्मण बिहान उठेर द्वारावतीबाट निक्लिए ॥४–६॥

मुक्तिको इच्छा गर्ने ती एक्ला ब्राह्मण पनि त्यसै ठाउँमा आइपुगे। शङ्खदहमा सहर्ष स्नान गरेर त्यस पर्वतमाथि चढे। माघशुक्ल द्वादशी बुधबारका दिन ती ब्राह्मणले गरुडमाथि बसेका भगवान्को दर्शन पाए। उनले वनका फलफूल र जल ल्याएर विधिपूर्वक सभक्ति ॐ नमो नारायणाय भन्दै विष्णुको पूजा गरे। विष्णुको मन्त्र एक लाख पटक जपे। परिक्रमा गरेर नमस्कार गरे र विष्णुकै अगाडि प्राणायाम तथा महायोग गरे ॥९–१०॥

हे विरूपाक्ष ! त्यसपछि बत्तीको ज्वालामा बत्ती विलीन भएजस्तै विष्णुको ज्योतिमा ती ब्राह्मण पनि विलीन भए। हे विरूपाक्ष ! यस लिङ्गको माहात्म्य फेरि सुन। त्यसको केही समयपछि यसै लिङ्गको अनुग्रहबाट कुनै किन्नर मुक्त भयो। घोडाको जस्तो मुख भएको सुग्रीव नाम गरेको किन्नर गीत गाउँदै, घुम्दै अघि यसै पर्वतमा आइपुगेको थियो ॥११–१३॥

---

१. गिरिमेन समारुहत्, इति न.सं.पु.पाठः ।
२. बुधवारेण संयुते, इति न.सं.पु.पाठः ।
३. ददर्शैनम्, इति न.सं.पु.पाठः ।
४. अलीलयत्ततः, इति न.सं.पु.पाठः ।

आषाढ्यां पूर्णिमायां स चैतल्लिङ्गान्तिकं सरन्। सम्पूज्येशञ्च तद्रात्रौ रुद्रयशो मुदा जगौ[५] ॥१४॥
तद्गीतसुस्वरेणाशु चाशुतोषस्तुतोष हि। वरञ्च दत्तवांस्तस्मै स्वसखित्वं विरूपदृक् ॥१५॥
वृषयुक्ते विमाने तमास्थाय प्रतिपद्दिने। निन्युः शिवपुरं व्योम्नः शिवदूताः परं हि ते ॥१६॥
सोऽप्यभूत्प्रमथश्रेष्ठो हयवक्त्रो हि किन्नरः। चरत्यद्यापि नूनं स[६] रुद्रपार्श्वे निरन्तम् ॥१७॥
आसीद् ब्रह्मपुरे विप्रः पातकैः पञ्चभिर्युतः। त्यक्तोऽन्वयैस्तथा लोकैर्ब्रह्मकर्मविवर्जितः ॥१८॥
म्लेच्छवृत्तिं समास्थाय म्लेच्छलोकैः सहाचरन्। म्लेच्छकन्यां विनोद्वार्य ! कञ्चित्कालं निनाय सः ॥१९॥
एकदा दिवसे विप्रश्चात्रैव प्राप्तवान्पुनः। मृगयार्थं समागत्य लिङ्गमेतद् ददर्श ह[७] ॥२०॥
नानापुष्पैः समायुक्तमन्यैश्चम्पकशाखिभिः। प्रेक्ष्य मनोहरं स्थानमचिन्तयत्तदा द्विजः ॥२१॥
क्व यास्यामि विहायैतत्स्थानञ्च परमं सुखम्। स्थास्याम्यहं सुखञ्चात्र फलमूलसुखान्विते[८] ॥२२॥
इति कृत्वाऽवसद्बुध्या म्लेच्छवृत्तिर्द्विजो द्विज। फलमूलाशनो नित्यं कञ्चित्कालं निनाय सः ॥२३॥
चम्पकैश्चान्यपुष्पैश्च नित्यं लिङ्गमपूपुजत्। प्रगायन् हस्ततालैश्च तद्यशांसि च नित्यशः ॥२४॥
कार्त्तिकस्य नवम्यां स शुक्लायाञ्च सुगीतवान्[९]। चरित्रं तन्महादेव्याः करतालैश्च भक्तितः ॥२५॥
तन्निशायां मृतः सोऽपि काले प्राप्ते विरूपदृक्। अत्रायुर्हरेर्दूता शिवदूतास्तथा पुनः ॥२६॥
युयुधुश्चात्र ते दूताः परस्परजयैषिणः। अस्माभिर्नीयते शैवं वैष्णवञ्चापि नीयते[१०] ॥२७॥

---

आषाढपूर्णिमाको दिन यसै लिङ्गको नजिकै आएर उसले भगवान् शङ्करको पूजा गऱ्यो। राति उहाँको भजन गऱ्यो। हे विरूपाक्ष ! उहाँको गीतको स्वरबाट भगवान् शङ्कर प्रसन्न हुनुभयो। उहाँले त्यस किन्नरलाई आफ्नो साथी हुने वर दिनुभयो। प्रतिपदाको दिन शिवजीका दूतहरूले साढेको चिह्नले युक्त भएको विमानमा त्यस किन्नरलाई राखेर आकाशमार्गबाट उत्तम शिवलोकमा लगे। घोडाको जस्तो मुख भएको त्यो प्रमथगणको नाइके बन्यो। आज पनि शिवजीको सधैँ पार्श्ववर्ती भएर त्यो किन्नर घुमिरहेको छ। ब्रह्मपुरमा पाँचै पापले युक्त भएका कुनै एउटा ब्राह्मण थिए। ब्राह्मणले गर्नुपर्ने कर्म नगरेको हुँदा उनलाई दाजुभाइ र समाजले त्यागिदिए। हे विरूपाक्ष ! ती ब्राह्मणले म्लेच्छका साथ सङ्गत गरे, म्लेच्छकै वृत्ति लिए, म्लेच्छकै छोरी विवाह गरेर केही समय बिताए ॥१४-१९॥

एकदित ती ब्राह्मण शिकार खेल्दै यसै ठाउँमा आइपुगे। उनले यस लिङ्गलाई देखे। त्यसपछि ती ब्राह्मणले चाँपका रुख र नानाथरी फूलहरूले युक्त भएको यस ठाउँलाई देखेर विचार गरे। हे विरूपाक्ष ! 'अत्यन्त सुखमय यस सुन्दर ठाउँलाई छाडेर कहाँ जाऊँ ! म फल, कन्दमूल र फूलले परिपूर्ण भएको यसै ठाउँमा आनन्दपूर्वक बस्नेछु' भन्ने विचार गरेर म्लेच्छको वृत्ति भएका ती ब्राह्मण त्यसै ठाउँमा बसे। सधैँ फल, कन्दमूल खाएर उनले केही समय बिताए। चाँप र अरू वृक्षका फूलहरूले लिङ्गको पूजा गरे। दिनदिनै हातको ताली बजाएर भगवान्‌को लीलाको गायन गरे। कार्तिकशुक्ल नवमीका दिन ताली बजाउँदै भक्तिपूर्वक उनले महादेवीको चरित्रको गान गरे ॥२०-२५॥

हे विरूपाक्ष ! त्यसै दिन राति काल आइसकेको हुँदा ती ब्राह्मणको मृत्यु भयो। त्यसपछि त्यहाँ भगवान् विष्णु र शिवजीका दूतहरू आए। 'यो शैव हो, हामी लान्छौँ' भनेर शिवका दूतहरूले भने। यो विष्णुभक्त हो, हामी लान्छौँ भनेर विष्णुका दूतहरूले भने। दुबैमा विजयको प्रतिस्पर्धा भयो। दुवै देवताका दूतहरूका बीचमा भयानक युद्ध भयो ॥२६-२७॥

---

५. रुद्रयशः प्रगीयत, इति न.सं.पु.पाठः।
६. अद्यापि व्यचरन्नूनम्, इति न.सं.पु.पाठः।
७. मृगयार्थमसौ चैन लिङ्गञ्च प्रददर्श सः, इति न.सं.पु.पाठः।
८. फलमूलप्रसूनके, इति न.सं.पु.पाठः।
९. प्रगायते, इति न.सं.पु.पाठः।
१०. वैष्णवञ्च ब्रवत्ययम्, इति न.सं.पु.पाठः।

तत्क्षणादत्र योगिन्यः सिंहयानधरा द्विज । चतुःषष्टिगणाः शीघ्रमाययुश्च तदाज्ञया ॥२८॥
गर्हयन्त्यश्च तान्दूतांस्तमास्थाय विमानके । देव्या लोकं मुदा निन्युर्योगिन्यो हर्षपूर्वकम्[११] ॥२९॥
हतश्रियो ययुः स्वर्गं श्वसन्तो मलिनाननाः । योगिनीमर्दितौजोभिः[१२] प्रभुभ्यां तन्निवेदितम् ॥३०॥
भूयः शृणु विरूपाक्ष ! माहात्म्यं गरुडस्य च । अष्टौ नागानृते तार्क्ष्यः सर्वसर्पान् भुनक्ति च ॥३१॥
भुजङ्गैः सह तार्क्ष्यस्य चासीद्वादो मिथः पुरा । प्राप्तो भङ्गस्तथा नागैस्तार्क्ष्यस्तानजयद्भृशम् ॥३२॥
तद्विरोधेन तार्क्ष्योऽसौ चाद्यापि तान्भुनक्ति हि । प्रावृट्काले गिरौ धृत्वा गुहारण्येषु मार्गयन् ॥३३॥
शङ्खपालेन[१३] तज्ज्ञात्वा चैतद्ध्रदे तपः कृतम् । तस्माच्छङ्खह्रदो ख्यातः सर्वह्रदोत्तमोत्तमः ॥३४॥
तत्र स्नात्वा भवेन्मर्त्यो नागभयविवर्जितः । श्रावणासितपञ्चम्यां निष्पापोऽसौ विशेषतः ॥३५॥
आरोहति गिरिञ्चैनं स्नात्वा तत्र नरो हि यः । षण्मासाभ्यर्जितैः पापैस्तस्यात्मा स प्रमुच्यते ॥३६॥
अध्युष्य[१४] चैकरात्रिञ्च शङ्करं वा हरिं तथा । यः पश्यति तदात्मा स वत्सरार्धैर्विमुच्यते[१५] ॥३७॥
आरुह्यैनं गिरिं भक्त्या चैतयोः पुरतः स्थितः । विनिद्रः प्रजपेन्मन्त्रं तथाऽस्य शृणु तत्फलम् ॥३८॥
अश्वमेधसहस्रेभ्यो वाजपेयसहस्रतः । व्रतोपवासपूजाभ्यो[१६] दानादिभ्यश्च यत्फलम् ॥३९॥
स तत्फलानि सम्प्राप्य प्राप्नुयात्[१७] खलु तत्पदम् । पूर्वजन्मार्जितैः पापैर्मुच्यते तत्क्षणाद्धि सः ॥४०॥

हे विरूपाक्ष ! यो दृश्य देखेर भगवान् शङ्करको आज्ञा अनुसार सिंहमा चढेर चौसट्ठी गणले युक्त भएका योगिनीहरू तुरुन्तै त्यहाँ आइपुगे । योगिनीहरूले ती दुबैथरी दूतहरूलाई गाली गरे र ती ब्राह्मणलाई विमानमा राखेर खुसी हुँदै सम्मानका साथ देवीको लोकमा लगे । मलिन मुख लिएर लामो सास फेर्दै ती देवगणहरू स्वर्ग गए । योगिनीबाट घमण्ड तोडिएका ती दूतहरूले अन्त्यमा स्वामीलाई भएको वृत्तान्त सुनाए ॥२८-३०॥

हे विरूपाक्ष ! अब गरुडको माहात्म्य सुन । उनी आठवटा नागलाई छोडेर सबै सर्पलाई खान्छन् ।अघि सर्प र गरुडको बीचमा ठूलो झगडा भयो । सर्पहरूले गरुडले भनेको मानेनन् र युद्धमा सर्पलाई गरुडले जिते । त्यसै झगडाले गर्दा गरुड आज पनि वर्षाको समयमा गुफा र जङ्गलहरूमा खोजी खोजी सर्पलाई समातेर खान्छन् । त्यो रहस्य थाहा पाएर शङ्खपाल नाम गरेका नागले त्यसै तलाउमा तपस्या गरे । त्यसै कारणले गर्दा सबै तलाउमध्ये उत्तम तलाउ भएको त्यस तलाउको नाम शङ्खह्रद रह्यो ॥३१-३४॥

विशेष गरी श्रावणशुक्ल पञ्चमीका दिन यस तलाउमा स्नान गर्ने मानिस पापबाट मुक्त हुन्छ । उसलाई सर्पबाट पनि कुनै डर हुँदैन । यस तलाउमा स्नान गरेर जो मानिस यो पहाड चढ्छ, त्यो मानिसको आत्मा छ महिना अघिदेखि गरेको सबै पापबाट मुक्त हुन्छ । जो व्यक्ति त्यस ठाउँमा एकरात बसी विष्णु अथवा महादेवको पूजापाठ गरेर दर्शन गर्दछ, त्यसका वर्षदिनसम्म गरेका पापहरू छुट्नेछन्, यसको आत्मा मुक्त हुनेछ ॥३५-३७॥

यस पर्वतमा चढेर भक्तिपूर्वक यी दुई देवताको अगाडि उभिएर जाग्राम बसी जसले मन्त्र जप्छ, त्यसको फल सुन । हजारौं अश्वमेध यज्ञ गर्दा जुन फल पाइन्छ, हजारौं वाजपेययज्ञ गर्दा जुन फल मिल्छ, भोकै बसेर व्रत,पूजा र अनेक प्रकारका दान एवं पुण्य कर्म गर्दा जुन फल प्राप्त हुन्छ, त्यो फल दुई देवताको अगाडि भक्तिपूर्वक उभिएर मन्त्र जप्दा प्राप्त हुन्छ । त्यस्तो साधकले भगवान्को पद पाउँछ र ऊ पूर्वजन्ममा गरेका सम्पूर्ण पापबाट तुरुन्तै मुक्त हुन्छ ॥३८-४०॥

---

११. बहु मोद्य च, इति न.सं.पु.पाठः ।
१२. योगिनीमर्दितौजस्ते, इति न.सं.पु.पाठः ।
१३. शङ्खपालोऽपि, इति न.सं.पु.पाठः ।
१४. प्रोषित्वा, इति न.सं.पु.पाठः ।
१५. चाब्दजाघैर्विमुच्यते, इति न.सं.पु.पाठः ।
१६. व्रतोपोष्यार्चनाच्चैव दानाच्चैव, इति न.सं.पु.पाठः ।
१७. प्रलभेत, इति न.सं.पु.पाठः ।

दिश्यग्नेश्च ह्यतो गच्छ यत्राऽऽस्ते वाल्मीकीश्वरः। वीरभद्राख्यतीर्थाच्च योजनार्द्धस्थलं[१८] द्विज ॥४१॥
वीरभद्रामहातीर्थे स्नात्वेश्वरं प्रपूजय। हनूमाँश्तत्र नित्यं वै चाऽध्यास्ते हि विरूपदृक् ॥४२॥
एतद्धि तुभ्यं कथितं महत्त्वं[१९] कीलेशनारायणशैलजानाम्[२०]।
भूयो हि वक्ष्यामि विरूपनेत्र चान्यस्य तत्रैव शृणु प्रशंसाम् ॥४३॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां कीलेश्वरमाहात्म्यं नाम सप्तविंशत्युत्तरशततमोऽध्यायः ॥१२७॥

---

हे विरूपाक्ष ! यहाँबाट दुई कोस पर आग्नेय दिशामा वीरभद्रा नाम गरेको तीर्थमा वाल्मीकीश्वर भगवान् रहनुभएको छ, त्यहाँ जाऊ। वीरभद्र महातीर्थमा स्नान गरेर शङ्कर भगवान्‌को पूजा गर। हे विरूपाक्ष ! त्यहाँ हनुमान् सधैं बस्नुहुन्छ ॥४१-४२॥

हे विरूपाक्ष ! मैले तिमीलाई विष्णु, देवी र कीलेश्वर महादेवको यो माहात्म्य बताएँ। अरू माहात्म्य फेरि म बताउँनेछु, त्यसै ठाउँमा सुनौला ॥४३॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा कीलेश्वरमाहात्म्यको वैशिष्ट्यनामक एकसय सत्ताइसौं अध्याय पूरा भयो।

---

१८. माहात्म्यम्, इति न.सं.पु.पाठः।
१९. विष्णोश्च देव्याश्च कीलेश्वरस्य, इति न.सं.पु.पाठः।
२०. योजनार्द्धे समं द्विज, इति न.सं.पु.पाठः।

# अष्टाविंशत्युत्तरशततमोऽध्यायः

## वीरभद्रतीर्थवाल्मीकेश्वरयोर्महिमा

### स्कन्द उवाच

भूयोऽव्रजद्विरूपाक्षो मुनिना तेन वै समम्। समं हनुमता यत्र वाल्मीकीशो विराजते[1] ॥१॥
वीरभद्रे महातीर्थे भक्त्या सस्नौ विरूपदृक्। वाल्मीकीश्वरमार्द्रेण चेतसाऽपूपुजन्मुने ॥२॥
चैत्रशुक्लतृतीयायास्तन्निशायाञ्च विरूपदृक्। लिङ्गं सम्पूज्य[2] माहात्म्यमपृच्छद् भक्तितो मुनिम् ॥३॥

### विरूपाक्ष उवाच

नमस्ते मुनिशार्दूल भूयोभूयोऽधुना विभो। भवतः स्प्रष्कामोऽहं माहात्म्यमेतयोर्वरम् ॥४॥
वाल्मीकिना कथं पूर्वमसौ संस्थापितः शिवः[3]। वीरभद्रमहातीर्थं प्रोक्तं मे भवता कथम् ॥५॥

### नेमुनिरुवाच

भद्राचलमहारण्याद्वकाश्रमसमीपतः। एका नदी समुद्भूता या च भद्रेति विश्रुता ॥६॥
वीरा नदी मया प्रोक्ता वीरकामफलप्रदा। तयोश्च सङ्गमे सस्नौ वीरभद्रो हराङ्गजः ॥७॥
तस्माल्लोके विरूपाक्ष ! तीर्थमेतद्धि सन्ततम्। वीरभद्रमिति ख्यातं शततीर्थफलप्रदम् ॥८॥
वाल्मीकिश्च[4] पुरा सस्नौ त्यक्त्वा कालीमिहागतः। तीर्थयात्राक्रमे चैतल्लिङ्गं स्थापितवान्मुदा ॥९॥
अत्राऽवतरति स्पष्टं[5] हनुमान् सर्वपर्वसु। संस्नाति विधिना सोऽपि चैतत्तीर्थे विरूपदृक् ॥१०॥
स्नात्वा च विधिना सोऽपि चैतल्लिङ्गं समर्चति। रामायणे प्रसिद्धैषा कथा लिङ्गकृपामयी[6] ॥११॥

---

## अध्याय – १२८

### वीरभद्रतीर्थ वाल्मीकीश्वरको महिमा

कार्तिक स्वामीले भन्नुभयो – त्यसपछि विरूपाक्ष फेरि नेमुनिलाई साथमा लिएर जहाँ वाल्मीकेश्वर भगवान् हनुमान्का साथ रहनुभएको थियो, त्यसै ठाउँमा गए। हे अगस्त्य मुनि ! विरूपाक्षले वीरभद्र नाम गरेको महातीर्थमा भक्तिपूर्वक स्नान गरे। त्यसपछि भावुक चित्तले वाल्मीकेश्वर भगवान्को पूजा गरे। चैत्रशुक्ल तृतीयाका दिन राति विरूपाक्षले शिवलिङ्गको भक्तिपूर्वक पूजा गरेर नेमुनिसित त्यस लिङ्गको माहात्म्य सोधे ॥१–३॥

विरूपाक्षले भने – हे मुनिश्रेष्ठ ! हजुरलाई मेरो बारम्बार नमस्कार छ। कसरी वाल्मीकि ऋषिले पहिले यहाँ शिवलिङ्गको स्थापना गर्नुभयो ? वीरभद्र महातीर्थ भनेर हजुरले मलाई बताउनुभयो, त्यो कसरी भयो ? म अब हजुरसित यी लिङ्ग र तीर्थको बारेमा सोध्न चाहन्छु ॥४–५॥

नेमुनिले भन्नुभयो – भद्राचल नाम गरेको वकाश्रम नजिकै रहेको जङ्गलबाट भद्रा नाम गरेकी नदी प्रादुर्भाव भइन्। वीरहरूका कामना पूर्ण गर्ने हुँदा वीरा नाम गरेकी अर्की नदी त्यहाँ पैदा भइन्। ती दुईको सङ्गममा शिवजीको अङ्गबाट उत्पन्न हुनुभएका वीरभद्रले स्नान गर्नुभयो। हे विरूपाक्ष ! त्यसैले यस तीर्थलाई मानिसहरूले वीरभद्र भनेर भने। यो तीर्थ सय तीर्थभन्दा बढी फल दिने खालको छ। अघि वाल्मीकिले काली नदीबाट आरम्भ गरी तीर्थहरू घुम्दै यसै ठाउँमा आएर स्नान गरेका थिए। उनले प्रसन्न भएर यस लिङ्गको स्थापना गरे। हे विरूपाक्ष ! यस तीर्थमा सबै पर्वमा हनुमान् ओर्लनुहुन्छ। उहाँले यसै तीर्थमा विधिपूर्वक स्नान गर्नुहुन्छ। यस तीर्थमा स्नान गरेर उहाँले विधिपूर्वक शिवलिङ्गको पूजा गर्नुहुन्छ। यसै लिङ्गको पूजाका प्रभावले हनुमान्लाई गौरवमय स्थान मिलेको कथा रामायणमा प्रसिद्ध छ ॥६–११॥

---

१. वाल्मीकीश्वरो हि यत्रास्ते हनुमाता समं तदा, इति न.सं.पु.पाठः।
२. पूज्य, इति न.सं.पु.पाठः।
३. वाल्मीकेन कथं पूर्वमेतद्धि स्थापितं शिवः, इति न.सं.पु.पाठः।
४. वाल्मीकोऽत्र, इति न.सं.पु.पाठः।
५. अत्रावतरते नूनम्, इति न.सं.पु.पाठः।
६. रामायण वरोन्मत्तः चैतल्लिङ्गप्रसादतः, इति न.सं.पु.पाठः।

शृणु विप्र ! प्रवक्ष्यामि कश्चिन्मुक्तो जनः पुरा । एतत्तीर्थप्रसादात्स चैतल्लिङ्गविशेषतः ॥१२॥
म्लेच्छपत्नी पुरा चाऽऽसीद्दुर्मुखी नाम विश्रुता । पूर्वजन्मविपाकेन बहुपुत्रवती हि सा ॥१३॥
सिंहाद्रिशेखरे रम्ये फलमूलाशनावसत् । तत्र सा सुषुवे प्रेक्ष्य दुःखातुराऽभवत् शिशुम् ॥१४॥
आदाय तं सुतं रात्रौ दुर्मुखी सा शनैः शनैः । तदधः कानने भीमे क्षिप्त्वा समागमद् द्रुतम् ॥१५॥
कश्चित् तत्राऽऽययौ म्लेच्छः मृगयायै भ्रमन् दिने[७] । ददर्श बालकं विप्र ! घनारण्ये च भीषणे ॥१६॥
स्तन्यार्थिनं रुदन्तं तं क्षिपन्तं हस्तपद्युगम् । प्रेक्ष्य तस्थौ तदा म्लेच्छः साश्चर्यं निर्जने वने[८] ॥१७॥
कस्यायं बालकश्चेति क्षिप्तश्चाऽत्र कयापि वा । अस्मिन्वने वदन् म्लेच्छस्तस्थौ चित्रेण चेतसा ॥१८॥
कस्यायं बालकः पुत्रः क्षिप्तो भवतु कानने । निष्पुत्रोऽहं प्रगृह्येमं पत्न्यै ददामि रक्षितुम्[९] ॥१९॥
इत्युक्त्वाऽसौ तदा विप्र ! तमादायाऽऽशु बालकम् । स्वगृहं प्रययौ शीघ्रं निःस्वो लब्धधनो यथा ॥२०॥
अर्पयित्वा[१०] मुदा म्लेच्छः पत्न्यै तं बालकं द्विज । सम्पालय प्रिये चैनं पुत्रत्वेनेत्युवाच सः[११] ॥२१॥
रक्षति स्म शिला सा तं पुत्रत्वेन निरन्तरम् । कृत्वेति स्वात्मजं बन्ध्या सुपदार्थैर्ह्यपालयत् ॥२२॥
यावद् द्वादशवर्षान्तं पुत्रवत्प्रत्यपालयत् । तदन्ते शक्तिमान् सोऽपि[१२] व्यचरन् मृगयावनम् ॥२३॥
कालान्ते कतिचित्सोऽपि मृगयार्थं वनङ्गतः । अत्रैव प्राप्तवान् विप्र ! हनूमन्तं व्यलोकयत्[१३] ॥२४॥
हनुमद्दर्शनान्म्लेच्छो ज्ञानवानभवत्तदा । प्रणनाम हनूमन्तमेतल्लिङ्गप्रपूजकम् ॥२५॥

---

हे विरूपाक्ष ! यस ठाउँमा अघि यसै तीर्थ र लिङ्गविशेषको अनुग्रहबाट कुनै व्यक्ति मुक्त भएको थियो, बताउँछु, सुन । दुर्मुखी नाम गरेकी म्लेच्छकी पत्नी थिई । उसले पूर्वजन्ममा गरेका कर्मले गर्दा धेरै सन्तान पैदा गरी । त्यो दुर्मुखी सिंहाद्रि नाम गरेको पर्वतको टाकुरामा फल तथा कन्दमूल खाएर बस्दथी । त्यसले त्यसै ठाउँमा छोरो पाई । छोरालाई देखेर ऊ दुःखित भई । राति त्यस छोरालाई लिएर बिस्तारै बिस्तारै आफैँ त्यो म्लेच्छपत्नी सिंहाद्रिपर्वतभन्दा तल रहेको डरलाग्दो जङ्गलमा गई र छोरालाई त्यहीँ फ्याँकेर तुरुन्तै फर्किई ॥११-१५॥

हे विरूपाक्ष ! त्यसै दिन कुनै म्लेच्छ शिकार खेल्दै त्यहाँ आयो । उसले डरलाग्दो बाक्लो जङ्गलमा बालकलाई देख्यो । भोकले दूध पिउन खोजेर हातखुट्टा फ्याँकिरहेको बालकलाई देखेर उसले मनमा आश्चर्य मान्यो र केहीबेर ठभिएर हेरिरह्यो । 'यो कसको बालक होला ? कुन आमाले यस जङ्गलमा ल्याएर यस बालकलाई फ्याँकेकी होली ?' भन्दै त्यो म्लेच्छ आश्चर्यचकित भएर उभिइरह्यो सोच्यो- 'कसको छोरो यो बालक जङ्गलमा फालिएको होला । मेरा छोरा छैनन्, यसलाई लगेर पालनपोषण गर्न पत्नीलाई दिन्छु' ॥१६-१९॥

हे विरूपाक्ष ! यति विचार गरेर सम्पत्ति नभएको मानिसले सम्पत्ति पाएझैँ सन्तान नभएको त्यस म्लेच्छले त्यस बालकलाई लिएर आफ्नो घर गयो । म्लेच्छले त्यो बालकलाई लगेर 'हे प्रिया ! छोराका रूपमा यसको पालनपोषण गर' भन्दै प्रसन्न भएर आफ्नी पत्नीलाई दियो । म्लेच्छकी शिला नाम गरेकी बाँझी पत्नीले पनि छोराका रूपमा स्वीकार गरी त्यसलाई मीठा-मीठा खाद्यपदार्थहरू दिएर आफ्नै छोरालाई जस्तै हरबखत उसको स्याहार-सुसार गरेर हुर्काई । बाह्र वर्ष नपुगेसम्म उसले त्यस बालकलाई पुत्रवत् स्नेहले पाली । त्यसपछि त्यो बालक पनि समर्थ बन्यो र शिकार खेल्न जङ्गलमा घुम्न थाल्यो । केही समयपछि शिलाको पालित पुत्र पनि शिकारका क्रममा जङ्गल घुम्दै यसै ठाउँमा आइपुग्यो र उसले हनुमान्‌लाई देख्यो । हे विरूपाक्ष ! हनुमान्‌लाई देख्नासाथ त्यतिखेर नै त्यो ज्ञानी भयो । उसले वाल्मीकीश्वरलिङ्गको पूजा गर्न लागेका हनुमान्‌लाई प्रणाम गर्‍यो ॥२०-२५॥

---

७. तत्राययौ तदा कश्चित्म्लेच्छो हि मृगयाद्रुतः, इति न.सं.पु.पाठः ।
८. म्लेच्छश्चैवमेवाद्भुतेन तम्, इति न.सं.पु.पाठः ।
९. पालितुम्, इति न.सं.पु.पाठः ।
१०. समर्पितः, इति न.सं.पु.पाठः ।
११. पुत्रत्वेनेति संवदत्, इति न.सं.पु.पाठः ।
१२. तदन्ते सोऽपि सामर्थ्यम्, इति न.सं.पु.पाठः ।
१३. ददर्श सः, इति न.सं.पु.पाठः ।

सोऽपि सस्नौ मुदा तीर्थे वीरभद्रे कपीशवत्। कूपाच्च जलमादायाऽस्नापयद् वाल्मीकीश्वरम्[१४] ॥२६॥
स्नपनेन धिया भक्त्या भविष्यामि नृपोत्तमः। आनर्च लिङ्गमेतत्स राजत्वप्राप्तिकांक्षया[१५] ॥२७॥
स्वगृहमगमन्म्लेच्छो हनूमद्दर्शनादिकम्। स्वजनेभ्यो हि तत्सर्वमवर्णयद्यथाद्भुतम् ॥२८॥
कालान्तरे क्वचिन्म्लेच्छः स पञ्चत्वमवाप्तवान्[१६] । विश्वकेतुर्नृपो भूत्वा मध्यदेशं हि भुक्तवान् ॥२९॥
भुनक्ति स्म सुखं राज्यं पुत्रपौत्रसमन्वितः। सार्वभौमश्चिरं कालं विश्वकेतुर्विरूपदृक् ॥३०॥
पूर्वजन्मनि जन्तूनां हिंसादूषणतः पुनः। अभूल्लोकविरुद्धोऽसौ प्रजादण्डेन लोभतः ॥३१॥
तत्र पुराऽकरोद्युद्धमन्यैर्नृपैररातिभिः। लोकविरोधतः सोऽपि महत्कष्टं तदाप्तवान् ॥३२॥
आक्रान्ते शत्रुभिः राज्ये पुत्रपौत्रान्वये हते। पूर्वजन्मविपाकेन चाऽभवत्क्षुब्धमानसः ॥३३॥
त्यक्त्वा प्रियां प्रियं सर्वं विरक्तमानसो नृपः। धिगिति जीवितं कृत्वा तीर्थाटनं तदाऽकरोत् ॥३४॥
विरक्तानां मुखाच्छ्रुत्वा हिमवद्गह्वरं ययौ। तीर्थेषु निर्जनः स्नात्वा स्थानेऽस्मिन्[१७] प्राप्तवान्पुनः ॥३५॥
पूर्वजन्मनि संस्नानात्सस्नौ चाऽत्रैव निर्जनः। पुराकृतञ्च सस्मार शुभाशुभं विरक्तवान् ॥३६॥
वाल्मीकीश्वरमार्द्रेण चेतसा सोऽपि सन्ततम्। श्रद्धया पूजयामास[१८] व्याप्य द्वादशवत्सरम् ॥३७॥
पौषे स पूर्णिमायाञ्च लेभे पञ्चत्वमातुरः[१९]। अनशनव्रतं कृत्वा देवमाराध्य तन्निशि[२०] ॥३८॥
तमास्थाय हि तद्याने निन्युः शिवपुरं गणाः। पुष्पवर्षैश्च तद्वाद्यैः रुद्रकन्याभिरावृतम् ॥३९॥
स एवाभूद् गणश्रेष्ठो रुद्रस्याऽनुचरोऽनिशम्। विश्वकेतुर्विरूपाक्ष चाऽद्यापि रुद्रवत्सुखी ॥४०॥

---

उसले पनि हनुमान्‌ले जस्तै खुसी भएर त्यस तीर्थमा स्नान गऱ्यो। कुवाबाट ठोक्रामा पानी ल्याएर वाल्मीकीश्वर शिवलिङ्गलाई स्नान गरायो। आफू उत्तम राजा हुने इच्छा मनमा राखेर उसले भक्तिका साथ शिवलिङ्गलाई स्नान गराई सो शिवलिङ्गको पूजा गऱ्यो। त्यसपछि त्यो म्लेच्छ आफ्नो घर गयो। उसले हनुमान्‌को दर्शनदेखि लिएर भएको सबै अद्‌भुत घटना आफ्ना मानिसहरूलाई बतायो। त्यसको केही समयपछि त्यो मऱ्यो। त्यसपछि अर्को जन्ममा विश्वकेतु नामको राजा भएर त्यसले मध्यदेशको भोग गऱ्यो। हे विरूपाक्ष ! केही समयसम्म त्यसले छोरा, नाति र परिवारका साथ सुखपूर्वक राज्यको भोग गऱ्यो। धेरै समयसम्म त्यो चक्रवर्ती पनि भयो ॥२६-३०॥

पूर्वजन्ममा धेरै जन्तुहरूलाई मारेको पाप र लोभले प्रजाहरूलाई धेरै दण्ड दिएको हुँदा नरनारीहरू यसका विरोधी बने। त्यहाँ अरू शत्रु राजाहरूसित यसको लडाईं पऱ्यो। जनतासित विरोध भएकाले यसले ठूलो कष्ट पायो। शत्रुले राज्यमाथि आक्रमण गरे। आक्रमणमा परी उसका छोरा, नाति, पनाति र सबै वंशज समाप्त भए। पूर्वजन्मको कर्मको संस्कारले गर्दा त्यो अत्यन्त क्षुब्ध बन्यो र उसले पत्नी र आफ्नो सर्वश्व त्यागिदियो। विरक्त भएर यस जिन्दगीलाई धिक्कार छ भन्दै ऊ तीर्थहरूको भ्रमण गर्न लाग्यो ॥३१-३४॥

वैरागीहरूको मुखबाट वैराग्यजनक उपदेश सुनेर ऊ हिमालयको गुफामा गयो। त्यहाँका तीर्थहरूमा स्नान गरेर ऊ एक्लै फेरि यहाँ आएको थियो। पूर्वजन्ममा यहाँ स्नान गरेको हुँदा एक्लै आएको त्यस म्लेच्छले त्यसै ठाउँमा पुनः स्नान गऱ्यो। अनि उसले पूर्वजन्ममा गरेका राम्रा र नराम्रा सबैथरी कामहरू सम्झियो। त्यसले भावुक हृदयले बाह्र वर्षसम्म भक्तिपूर्वक वाल्मीकीश्वर भगवान्‌को निरन्तर उपासना गऱ्यो। पुष महिनाको पूर्णिमाको दिन राति केही नखाई लिङ्गको पूजा गरेर त्यस वैरागीले प्राण छोड्यो। शिवजीका गणहरूले त्यसलाई यानमा राखेर फूलको वर्षा गरेर बाजा बजाउँदै रुद्रकन्याद्वारा सुहाएको शिवलोकमा लगे। हे विरूपाक्ष ! त्यही विश्वकेतु प्रमथ आदि गणमा मुख्य भएर भगवान् शङ्करको सेवक बनेको छ। आज पनि रुद्रजस्तै सुखी भएर रहेको छ ॥३५-४०॥

---

१४. तृणेन जलमादाय स्नापयद्वल्मीकं तदा, इति न.सं.पु.पाठः।
१५. राजत्वकांक्षयेति वै, इति न.सं.पु.पाठः।
१६. कालान्ते च ततः कश्चित् पञ्चत्वमलभद्धि सः, इति न.सं.पु.पाठः।
१७. अत्रासौ, इति न.सं.पु.पाठः।
१८. चक्रे उपासकं भक्त्या, इति न.सं.पु.पाठः।
१९. पञ्चत्वमलभत्तदा, इति न.सं.पु.पाठः।
२०. भूत्वा विनाशाने रोगी चैनं पूज्य महानिशि, इति न.सं.पु.पाठः।

एतत्तीर्थे च यः स्नात्वा चैनमुपासते द्विज। इच्छासिद्धिं च सम्प्राप्य[२१] रुद्रलोकं स गच्छति ॥४१॥
भूयो गच्छ विरूपाक्ष चाऽतो वारुणकानने। धनुषां द्विशते दूरे यत्राऽऽस्ते मङ्गलेश्वरः ॥४२॥
प्रोक्तं मया ते प्रवरं महत्त्वं[२२] तीर्थस्य चैतस्य विशेषतो वै।
लिङ्गस्य श्रद्धामयचेतसा च[२३] भूयः प्रवक्ष्यामि च ते तदन्यम् ॥४३॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां वीरभद्रतीर्थवाल्मीकीश्वरयोर्माहात्म्यं नाम अष्टाविंशत्युत्तरशततमोऽध्यायः ॥१२८॥

---

जसले यस तीर्थमा स्नान गरेर यस लिङ्गको उपासना गर्छ त्यो आफ्नो इच्छा अनुसारको फल प्राप्त गरेर रुद्रलोक जान्छ। हे विरूपाक्ष ! फेरि यहाँबाट पश्चिमतिर दुईसय धनुष प्रमाणबराब टाढा रहेको जङ्गलमा जाऊ। त्यस ठाउँमा मङ्गलेश्वर भगवान् रहनुभएको छ ॥४१-४२॥

मैले तिमीलाई यस उत्कृष्ट तीर्थको माहात्म्य विशेष गरेर बताएँ। लिङ्गको माहात्म्य पनि बताएँ। फेरि अरू पनि बताउनेछु ॥४३॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा वीरभद्रतीर्थ र वाल्मीकीश्वरको माहात्म्यनामक एकसय अट्ठाइसौं अध्याय पूरा भयो।

---

२१. मसमालभ्य, इति न.सं.पु.पाठः ॥
२२. माहात्म्यम्, इति न.सं.पु.पाठः।
२३. लिङ्गस्य हार्द्रेण हि चेतसा त्वम्, इति न.सं.पु.पाठः।

# ऊनत्रिंशत्तमोऽध्यायः

## भद्रतीर्थमङ्गलेश्वरशिवलिङ्गयोर्महिमा

### स्कन्द उवाच

भूयोऽगमद्विरूपाक्षो यत्रास्ते मङ्गलेश्वरः । भद्रानद्यां मुदा स्नात्वा स ईश्वरसमर्चकः ॥१॥
चैत्रस्य शुक्लपञ्चम्यां विनिद्रो निशि पूजकः । पप्रच्छ तन्माहात्म्यं तं विरूपाक्षो महामुनिम् ॥२॥
आकर्ण्य तद्वचोऽगस्त्य ! भक्तोक्तं नेमुनिर्निशि । अवर्णयन् महिमानं[1] विरूपाक्षाय साम्प्रतम् ॥३॥

### नेमुनिरुवाच

आसीत्कश्चिन्मुनिः पूर्वं मङ्गलो नाम विश्रुतः । अत्रैव विमलारण्ये शताब्दं तप्तवान् रहः ॥४॥
एतल्लिङ्गं च संस्थाप्य[2] भक्तिपूर्वेण चेतसा । जजाप तन्मनुं नित्यं क्षुत्पिपासाविवर्जितः ॥५॥
साङ्ख्ययोगेन विप्रेश ! चाऽत्रैव मुक्तवान्तनुम् । ततो लिङ्गमिदं ख्यातं मङ्गलेश्वरनामतः[3] ॥६॥
एतल्लिङ्गस्य माहात्म्यं भूयः शृणु वदामि ते । म्लेच्छेन केनचित् प्राप्तो[4] वरः प्रमथनायकात् ॥७॥
आसीदेतद्वने म्लेच्छ ऊर्ध्वकेश इति श्रुतः[5] । मृगयार्थं चरन्नार्य ! चैतल्लिङ्गान्तिकं पुरा ॥८॥
दूराद्ददर्श नर्तन्तं शङ्करं प्रमथैः सह । तिरोदधे निमेषेण तस्थौ स स्वयमेव च ॥९॥
त्यक्त्वा च कार्मुकं तूष्णीमारोहच्चम्पकं कुजम् । तत्पुष्पाणि समादाय[6] चाऽत्रागमत्त्वरान्वितः ॥१०॥
मधोः कृष्णचतुर्दश्यामेतल्लिङ्गमपूपुजत् । आधाय चेतसि म्लेच्छो रुद्रेण सह सङ्गमम् ॥११॥
एवमेव च षण्मासान् म्लेच्छो निनाय नित्यशः । सम्पूज्य भक्तितो लिङ्गं फलमूलाशनो मुदा ॥१२॥

---

## अध्याय - १२९

### भद्रतीर्थ र मङ्गलेश्वर शिवलिङ्गको महिमा

कार्तिक स्वामीले भन्नुभयो - त्यसपछि विरूपाक्ष जहाँ मङ्गलेश्वर बस्नुभएको थियो, त्यसै ठाउँमा गए। उनले भद्रा नदीमा स्नान गरेर सहर्ष ईश्वरको पूजा गरे। विरूपाक्षले चैत्रशुक्ल पञ्चमीका दिन लिङ्गको पूजा गरेर राति जाग्राम बसी नेमुनिसित त्यस तीर्थ र लिङ्गको माहात्म्य सोधे। भक्तिपूर्वक विरूपाक्षले भनेको वचन सुनेर नेमुनिले राति विरूपाक्षलाई तीर्थ र लिङ्गको माहात्म्य बताउनुभयो ॥१-३॥

नेमुनिले भन्नुभयो - अघि मङ्गल नाम गरेका कुनै ऋषि थिए। यिनले यसै निर्मल जङ्गलमा सय वर्षसम्म एकान्त स्थलमा रहेर तपस्या गरे। भोक र तिर्खालाई वास्ता नगरी उनले भक्तिपूर्वक सहर्ष यस लिङ्गको स्थापना गरेर सधैं भगवान् शङ्करको मन्त्र जपे ॥४-५॥

हे विरूपाक्ष ! साङ्ख्यशास्त्रमा प्रतिपादित योगपद्धतिबाट उनले यसै ठाउँमा शरीर छोडे। त्यसै समयदेखि यो लिङ्गको नाम मङ्गलेश्वर भयो। यस लिङ्गको माहात्म्य म फेरि तिमीलाई बताउँछु, सुन - कुनै म्लेच्छले यहाँ तपस्या गरेर प्रमथगणका स्वामी भगवान् शङ्करबाट वर पाएको थियो। हे विरूपाक्ष ! यस जङ्गलमा यसै लिङ्गको नजिकै शिकार खेलेर विचरण गर्ने ऊर्ध्वकेशनामक कुनै म्लेच्छ थियो ॥६-८॥

त्यस ठाउँमा प्रमथगणका साथ नाचिरहनुभएका शङ्करलाई त्यसले टाढैबाट देख्यो। एकैछिनमा शिवजी अन्तर्धान हुनुभयो र त्यो म्लेच्छमात्र त्यहाँ रह्यो। धनुषको ठोक्रालाई त्यसै छाडेर त्यो म्लेच्छ चाँपको रुखमा चढ्यो। चाँपका फूलहरू टिप्यो र हतार हतार त्यहाँ आयो। त्यसले भगवान् शङ्करलाई भेट्ने इच्छा गर्दै कृष्णचतुदशीका दिन भक्तिपूर्वक यस लिङ्गको पूजा गऱ्यो। फलफूल खाएर भक्तिपूर्वक त्यस म्लेच्छले त्यसै ठाउँमा सहर्ष लिङ्गको पूजा गर्दै छ महिना बितायो ॥९-१२॥

---

१. अवर्णयन्माहात्म्यं तद, इति न.सं.पु.पाठः ।
२. एतल्लिङ्गं मुदा स्थाप्य, इति न.सं.पु.पाठः ।
३. ततः प्रभृति लिङ्गं तन्मङ्गलेश्वर आश्रुतः, इति न.सं.पु.पाठः ।
४. कश्चिन्म्लेच्छेन सम्प्राप्ते, इति न.सं.पु.पाठः ।
५. ऊर्ध्वकेशोऽभिधानकः, इति न.सं.पु.पाठः ।
६. तत्पुष्पकानि चादाय, इति न.सं.पु.पाठः ।

भाद्रकृष्णचतुर्दश्यां पञ्चत्वं प्राप्तवान्निशि। काले प्राप्ते तदा म्लेच्छश्चैतल्लिङ्गान्तिके द्विज ॥१३॥
अत्राऽऽगत्य पुनर्दूता शैवाः पुष्पकपाणयः। तमास्थाय विमानेन निन्युः शिवपुरं महत् ॥१४॥
अभूत्सोऽपि गणश्रेष्ठश्चोर्ध्वकेशाभिधानकः। रुद्रस्य पार्श्वगो नित्यं विचरन्प्रमथैः सह ॥१५॥
भूयो गच्छ विरूपाक्ष ! धनुःसहस्रमग्नितः। कन्दरे हि निकुञ्जाद्रेर्यत्राऽऽस्ते विमलेश्वरः ॥१६॥
प्रोक्तं मया ते निखिलेन चाऽस्य रुद्रस्य माहात्म्यमजस्य विप्र।
भूयो माहात्म्यं विमलेश्वरस्य वक्ष्यामि तत्रैव च तस्य विद्वन् ॥१७॥

इति श्रीस्कन्दपुराणे हिमवतखण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां
भद्रतीर्थमङ्गलेश्वरयोर्माहात्म्यं नामोनत्रिंशमोऽध्यायः ॥१२९॥

---

हे विरूपाक्ष ! काल आएपछि भाद्रकृष्ण चतुर्दशीका दिन राति त्यो म्लेच्छ यसै लिङ्गको नजिकै मऱ्यो। शिवजीका दूतहरू पुष्पक विमान लिएर यहाँ आए अनि त्यसलाई विमानमा राखेर उत्तम शिवलोकमा लगे। त्यो ऊर्ध्वकेश नाम गरेको म्लेच्छ पनि प्रमथगणहरूमा मुख्य भई उनीहरूका साथै हिँड्ने शिवजीको पार्श्ववर्ती बन्न पुग्यो। हे विरूपाक्ष ! अब तिमी हजार धनु पर आग्नेय दिशामा जाऊ। झाडी भएको त्यस निकुञ्जपर्वतको गुफामा विमलेश्वर भगवान् रहनुभएको छ ॥१३-१६॥

हे विद्वान् विरूपाक्ष ! मैले तिमीलाई मङ्गलेश्वर रुद्र भगवान्को सम्पूर्ण माहात्म्य बताएँ। म फेरि विमलेश्वर भगवान्को माहात्म्य त्यसै ठाउँमा बताउनेछु ॥१७॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा भद्रतीर्थ र मङ्गलेश्वरको माहात्म्यनामक
एकसय उनन्तीसौं अध्याय पूरा भयो।

# त्रिंशदुत्तरशततमोऽध्यायः

## विमलोदकागङ्गाविमलेश्वरशिवलिङ्गयोर्महिमा

स्कन्द उवाच

ततोऽगमद्विरूपाक्षो मुनिनाऽगस्त्य ! वै समम्। विमलेशो हि यत्राऽऽस्ते तल्लिङ्गं हि प्रणम्य च ॥१॥
विमलोदकगङ्गायां स्नात्वा लिङ्गमपूपुजत्[1]। चैत्रस्य शुक्लसप्तम्यां निरशनो विनिद्रकः ॥२॥
तमपृच्छद्धि माहात्म्यं तल्लिङ्गस्य विरूपदृक्। तदाकर्ण्य मुनिस्तञ्च व्याजहार वचस्तदा ॥३॥

नेमुनिरुवाच

आसीद्विरूपदृक् पूर्वं विमलो नाम विश्रुतः। वेदवेदाङ्गतत्वज्ञः सर्वशास्त्रविशारदः ॥४॥
जटिलो ब्रह्मचारी च धृतदण्डकमण्डलुः। पश्चिमे वयसि संस्थः[2] शिरःकम्पी महाशुचिः ॥५॥
ताडितो भगिनीपुत्रः पूर्वजन्मनि तेन च। तद्दोषात्स शिरःकम्पी चाऽभूद्धि विमलो द्विजः ॥६॥
विरक्तो निर्गतो गेहाद्धिमवत्पर्वतं प्रति। अत्रैव प्राप्तवान् विप्रो वृद्धत्वं हि शनैः शनैः ॥७॥
स सस्माराऽत्र गङ्गाञ्च स्नपनार्थं विरूपदृक्। एषा नदी समुद्भूतोवाह निर्मलजीवना[3] ॥८॥
एतल्लिङ्गं पुरोद्भूतं तज्जलेन समर्चितम्। विमलैरुपचारैश्च भक्तिपूर्वेण चेतसा ॥९॥
मार्गकृष्णचतुर्दश्यां निराहारो विनिद्रकः। सम्पूज्यैनं महारात्रौ शिवमन्त्रं जजाप सः ॥१०॥
ततश्चाऽऽविर्बभौ देवश्चाऽमावास्यां निशान्तरे। व्याजहार शुभं वाक्यं वरदानाय वै तदा ॥११॥

---

## अध्याय – १३०

### विमलोदका गङ्गा र विमलेश्वर शिवलिङ्गको महिमा

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य ! त्यसपछि त्यस लिङ्गलाई प्रणाम गरेर नेमुनिका साथ विरूपाक्ष जहाँ विमलेश्वर भगवान् हुनुहुन्थ्यो, त्यसै ठाउँमा गए। चैत्रशुक्ल सप्तमीका दिन विमलोदका नाम गरेकी गङ्गामा स्नान गरेर निराहार तथा जाग्राम बसी विरूपाक्षले विमलेश्वर लिङ्गको पूजा गरे। विरूपाक्षले त्यस लिङ्गको माहात्म्य नेमुनिसित सोधे। त्यो सुनेर नेमुनिले उनलाई उत्तर दिन लाग्नुभयो ॥१–३॥

नेमुनिले भन्नुभयो – हे विरूपाक्ष ! वेद–वेदाङ्गका तत्त्वज्ञ र सबै शास्त्रका ज्ञाता अघि विमल नाम भएका कुनै पुरुष थिए। यिनले जटा पालेका थिए, हातमा दण्ड र कमण्डलु लिएका थिए, उमेर ढल्केको थियो, यिनको शिर काँप्दथ्यो र यिनी पवित्र थिए। पूर्वजन्ममा उनले बहिनीको छोरो अर्थात् भानिजलाई पिटेका थिए। त्यसै दोषले गर्दा विमल नाम गरेका ब्राह्मणलाई शिर काँप्ने रोग लागेको थियो। हे विरूपाक्ष ! एकदिन साह्रै विरक्त भएर उनी घरबाट निस्किए र हिमालय पर्वततिर लागे। बिस्तारै बिस्तारै यी वृद्ध यसै तीर्थमा आइपुगे ॥४–७॥

हे विरूपाक्ष ! उनले स्नान गर्नका लागि भगवती गङ्गाको सम्झना गरे। त्यसपछि निर्मल जल भएकी यी नदी पैदा भइन् र बग्न थालिन्। अघि उत्पन्न भएको यस लिङ्गलाई निर्मल जल र विभिन्न पूजासामग्रीद्वारा भक्तिपूर्ण चित्तले यिनले पूजा गरे। मार्गकृष्ण चतुर्दशीका दिन निराहार तथा जाग्राम बसी शिवलिङ्गको पूजा गरेर यिनले राति शिवमन्त्र जपे। त्यसपछि अमावास्याका दिन रातको अन्त्यमा भगवान् शङ्कर प्रादुर्भाव हुनुभयो र उहाँले वर दिनका लागि कल्याणमय वाक्य बोल्नुभयो ॥८–११॥

---

१. तल्लिङ्गमर्चितम्, इति न.सं.पु.पाठः।
२. पश्चिमे वयसिस्थोऽसौ, इति न.सं.पु.पाठः।
३. एषा नदी समुद्भूता निर्मलार्णा ववाह च, इति न.सं.पु.पाठः।

विमलेश्वर उवाच

भविष्यसि च भो ब्रह्मन् मम पार्श्वचरो वरः। अर्चितो ब्रह्मकर्मोक्त्या यतोऽहं भवताऽधुना ॥१२॥
अर्चितो भवता भक्त्या चाद्याऽहं[४] हि यतो द्विज। तव नाम्ना भविष्यामि प्रख्यातो विमलेश्वरः ॥१३॥
भविष्यति च ते नाम्ना नदीयं सततं पुनः। सर्वलोकैर्हि धीरेति विख्याता विमलोदका ॥१४॥

नेमुनिरुवाच

साङ्ख्ययोगं समासाद्य चाऽत्रैव निधनं गतः। विप्रोऽसौ विमलो नाम माघकृष्णाष्टमीदिने ॥१५॥
रुद्रयाने तमास्थाय प्रमथा विमलं क्षणात्। प्रापयन्[५] शिवलोकं वै बहुमानपुरःसरम् ॥१६॥
स एव प्रमथश्रेष्ठश्चाऽभूद् विप्रो विरूपदृक्। रुद्रपार्श्वचरो नित्यं धृतसूत्रोपवीतकः ॥१७॥
तदादि मुनयो देवा न मुञ्चन्ति कदापि च। एतल्लिङ्गं समभ्यर्च्य चेदं स्थानं विरूपदृक् ॥१८॥
विमलोदकसुस्नातो विमलेश्वरमर्चति। विमलविग्रहो भूत्वा रुद्रलोकं प्रगच्छति ॥१९॥
भूयो गच्छ विरूपाक्ष चाऽतोऽप्यन्तर्दिशि ध्रुवम्। अनन्तेशो हि तत्राऽऽस्ते ऋष्याश्रमनितम्बके ॥२०॥
एतन्माहात्म्यं विमलेश्वरस्य जिज्ञासितं तद् भवता यतो वै।
प्रोक्तं मया ते हि विरूपनेत्र ! भूयश्च वक्ष्याम्यहमार्य ! यत्तत् ॥२१॥

इति श्रीस्कन्दपुराणे हिमवतखण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां
विमलोदकगङ्गाविमलेश्वरयोर्माहात्म्यं नाम त्रिंशदुत्तरशततमोऽध्यायः ॥१३०॥

---

विमलेश्वरले भन्नुभयो – तिमीले ब्रह्मकर्म अनुसार अहिले मेरो पूजा गऱ्यौ। हे ब्राह्मण ! तिमी मेरा उत्कृष्ट पार्श्ववर्ती हुनेछौ। हे ब्राह्मण ! तिमीले भक्तिपूर्वक आज मेरो पूजा गऱ्यौ, त्यसैले तिम्रो नाम जोडेर म विमलेश्वर भएर प्रसिद्ध हुनेछु। फेरि यी सबैले धीरा भन्दै आएकी नदी पनि तिम्रै नाम अनुसार विमलोदका नामले प्रसिद्ध हुनेछिन् ॥१२-१४॥

नेमुनिले भन्नुभयो – माघकृष्ण अष्टमीका दिन साङ्ख्यशास्त्रमा प्रतिपादन गरिएको योगविधिलाई ग्रहण गरेर ती विमल नाम गरेका ब्राह्मण यसै ठाउँमा मरे। तुरुन्तै शिवजीका प्रमथगणहरूले शिवजीको यानमा उनलाई राखेर सम्मानका साथ शिवलोकमा पुऱ्याए। हे विरूपाक्ष ! तिनै विमल नाम गरेका ब्राह्मण प्रमथगणहरूमा श्रेष्ठ भए। उनी सधैं जनै लगाएर शिवजीको पार्श्ववर्ती भएर बसेका छन् ॥१५-१७॥

हे विरूपाक्ष ! त्यसै समयदेखि देवता र ऋषिहरूले यस ठाउँलाई छाडेका छैनन्। उनीहरूले सधैं यस लिङ्गको पूजा गर्छन्। जसले विमला नदीको जलमा स्नान गरेर विमलेश्वर भगवान्को पूजा गर्छ त्यो व्यक्ति निर्मल शरीर भएर धारण गरी रुद्रलोकमा जान्छ। हे विरूपाक्ष ! यहाँबाट तिमी उत्तर दिशातिर जाऊ। त्यहाँ ऋषिका आश्रमको नजिकै अनन्तेश्वर महादेव रहनुभएको छ ॥१८-२०॥

यो विमलेश्वरको माहात्म्य तपाईंले मलाई सोध्नुभएको थियो। हे विरूपाक्ष ! मैले सबै बताएँ। म अ पनि जे जति माहात्म्य छन्, ती बताउनेछु ॥२१॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवतखण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा विमलोदका गङ्गा र विमलेश्वरको माहात्म्यनामक एकसय तीसौं अध्याय पूरा भयो।

---

४. चाद्य माम्, इति न.सं.पु.पाठः। ५. आनयन्, इति न.सं.पु.पाठः।

# एकत्रिंशदुत्तरशततमोऽध्यायः

अनन्तेश्वरशिवलिङ्गमहिमा

स्कन्द उवाच

भूयोऽगमद्विरूपाक्षो यत्राऽनन्तेश्वरो विभुः। ऋषितीर्थकृतस्नानः पुपूजाऽनन्तमीश्वरम्[1] ॥१॥
विनिद्रः पूजको रात्रौ चाऽपृच्छन्नेमुनिं निशि। ततो मधुसिताष्टम्यां भक्त्या प्रणम्य तं पुनः ॥२॥
निशम्य तद्वचो रात्रौ नेमुनिश्च घटोद्भव। अनन्ताख्यस्य लिङ्गस्य माहात्म्यं व्याजहार ह ॥३॥

नेमुनिरुवाच

आसन्पूर्वं विरूपाक्ष ऋषयोऽत्र सहस्रशः ॥४॥
तस्मादृष्याश्रमः प्रोक्त एष शैलो विचक्षणैः[2]। अगस्त्यो गालवो गार्ग्यः शक्तिर्धौम्यः पराशरः ॥५॥
कृष्णात्रेयश्च भगवानसितो देवलो बलः। बृहस्पतिरुतथ्यश्च मार्कण्डेयः श्रुतश्रवाः ॥६॥
द्वैपायनो विदर्भश्च जैमिनिर्माठरः कठः। विश्वामित्रो वशिष्ठश्च रोमशश्च महानृषिः ॥७॥
उत्तङ्कश्चैव रैभ्यश्च पौलोमश्च द्वितस्त्रितः। ऋषिर्वै कालवृक्षीयो मुनिर्मेधातिथिस्तथा ॥८॥
सारस्वतः पुरक्रोडः कुशिको गौतमस्तथा। भारद्वाजः स्थूलशिराः कश्यपः पुलहः क्रतुः ॥९॥
बृहदग्निर्हरिश्मश्रुर्विजयः कण्व एव च। दीर्घतपाश्च वैतण्डी वेदश्चाऽथांशुमच्छिवः ॥१०॥
अष्टावक्रो ददीतिश्च श्वेतकेतुस्तथैव च। उद्दालकः क्षारपाणिः शृङ्गी गौरमुखस्तथा ॥११॥
अग्निवेश्यः समीकश्च प्रमुचुर्मुमुचुस्तदा। एते चाऽन्ये च बहव ऋषयः संशितव्रताः ॥१२॥

---

## अध्याय – १३१

अनन्तेश्वरलिङ्गको महिमा

कार्तिक स्वामीले भन्नुभयो – त्यसपछि जहाँ अनन्तेश्वर भगवान् हुनुहुन्थ्यो त्यसै ठाउँमा विरूपाक्ष गए। उनले ऋषितीर्थमा स्नान गरेर अनन्तेश्वर लिङ्गको पूजा गरे। राति शिवलिङ्गको पूजा गरेर ननिदाईकन चैत्रशुक्ल अष्टमीका दिन भक्तिपूर्वक नमस्कार गरेर विरूपाक्षले नेमुनिसित सोधे। हे अगस्त्य मुनि ! उनको भनाइ सुनेर नेमुनिले अनन्त लिङ्गको माहात्म्य उनलाई बताउनुभयो ॥१–३॥

नेमुनिले भन्नुभयो – हे विरूपाक्ष ! अघि यहाँ हजारौं ऋषिहरू बस्थे। ऋषिहरूले निवास गरेकै कारणबाट यस पर्वतलाई ऋष्याश्रम भनियो। यस आश्रममा अगस्त्य, गालव, गार्ग्य, शक्ति, धौम्य, पराशर, कृष्णात्रेय, असित, देवल, बृहस्पति, उतथ्य, मार्कण्डेय, श्रुतश्रवा, द्वैपायन, विदर्भ, जैमिनि, माठर, कठ, विश्वामित्र, वसिष्ठ, लोमश, उतङ्क, रैभ्य, पौलोम, द्वित, त्रित, कालवृक्षीय, मेधातिथि, सारस्वत, पुरक्रोड, कुशिक, गौतम, भारद्वाज, स्थूलशिरा, कश्यप, पुलह, क्रतु, बृहदग्नि, हरिश्मश्रु, विजय, कण्व, वैतण्डी, दीर्घतपा, वेद, अंशुमान्, शिव, अष्टवक्र, ददीति, श्वेतकेतु, उद्दालक, क्षारपाणि, शृङ्गी, गौरमुख, अग्निवेश्य, समीक, प्रमुचु, मुमुचु यी र यस्तै अरू ऋषिहरू तपस्या, व्रत आदि गरी बसेका थिए ॥४–१२॥

---

१. ऋषितीर्थे च संस्नात्वा चानन्तेश्वर अर्चितः, इति न.सं.पु.पाठः।  २. तस्मादृश्याश्रमं प्रोक्तमेतच्छैलं विचक्षणैः, इति न.सं.पु.पाठः।

एते संसदि विप्रेशा अध्यासन्केचिदादृताः। स्वयम्भवो महाशम्भुर्लोकानां हितकाम्यया ॥१३॥
अस्मानुत्पादयामास न केवलं वयं द्विजाः[३]। एवं वदन्तो ते विप्राः[४] श्रीपशुपतये तदा ॥१४॥
प्रशस्य चैव नेमुर्वै दण्डवत्पतिताः क्षितौ। गतस्तेषु मुनिः[५] कश्चिन्मृदञ्चखान चाऽत्र वै ॥१५॥
खनित्रेणाऽत्र शौचार्थं बृहदग्निर्मुनीश्वरः। ददर्शैतन्महालिङ्गं बृहदग्निस्तदा द्विज ॥१६॥
मृदभ्यन्तरसम्भूतं मृत्तिकोत्खनने कृते। आहूय स मुनीन् सर्वान् लिङ्गकोटिमदर्शयत्[६] ॥१७॥
किमिति दृश्यतामेतद् भो भो मुनीश्वरा इदम्। सम्भूय ऋषयश्चाऽत्र चख्नुश्च मृत्तिकां तदा ॥१८॥
खाते लोकयितुं मूलमेतल्लिङ्गस्य साम्प्रतम्। त्रिंशद्धस्तप्रमाणेन खनित्वा ते च मृत्तिकाम् ॥१९॥
नाऽदर्शन्नपि तन्मूलं स्वयम्भूरिति मेनिरे। अनन्तरूपमस्माभिरस्य लिङ्गस्य लोकितम्[७] ॥२०॥
अनन्तेश्वरनामेदं भवतु प्रथितं भुवि[८]। तद्बिलञ्च मृदाच्छाद्य ज्ञात्वा लिङ्गं प्रमाणितम् ॥२१॥
अपूपुजन्मुदा भक्त्या भावभक्त्या[९] मुनीश्वराः। ततः प्रभृति तल्लिङ्गं पुण्यतीर्थजलार्चनैः[१०] ॥२२॥
पूज्यते मुनिभिर्भक्तै[११]र्नानोपहारकैः सदा। एतल्लिङ्गस्य माहात्म्यं शृणु विरूपदृक् पुनः ॥२३॥
मुक्तः कश्चित्पुरा म्लेच्छश्चैतल्लिङ्गप्रसादतः। उलूकास्याऽभिधानश्च ह्यासीन्म्लेच्छः पुरा द्विजः ॥२४॥
पूर्वजन्मविपाकेन नीचाचारेण सम्भवः। नीचाचारेण यत् किञ्चिद् भुक्तवान् निशि प्रत्यहम्[१२] ॥२५॥
चोर्येणादाय चाऽभोज्य पूर्वजन्मन्युलूकवत्। एवमेवाऽप्तकालेऽपि म्लेच्छाऽसावग्रसीद्धि तत् ॥२६॥

---

सबैद्वारा सम्मानित यी ऋषिहरू धर्मसभामा विराजमान थिए। उनीहरू लोकको हितको कामना गरेर स्वयम्भू महाशम्भुले हामीलाई पैदा गर्नुभएको हो भन्दै उनीहरू आफू केवल ब्राह्मण नभई लोककल्याणकारी पनि भएको र उनीहरूको मुख्य कर्तव्य लोकको कल्याण गर्नुमात्रै भएको सत्य बताइरहेका थिए। यसप्रकार आफ्नो उत्पत्तिको कारण खुलाउँदै आपसमा भगवान् पशुपतिको प्रशंसा गर्दै ती ऋषिहरूले पृथ्वीमा दण्डजस्तै लम्पसार परेर उहाँलाई प्रणाम गरे। त्यसै समयमा बृहदग्नि ऋषिले त्यहाँ गएर खन्तीले माटो खने। शौचकार्यका निमित्त बृहदग्नि ऋषिले खन्तीले माटो खन्दा माटोभित्र लुकेको शिवजीको महालिङ्गको दर्शन गरे। उनले सबै ऋषिहरूलाई बोलाएर कोटिलिङ्ग देखाए। यो के हो ? हे ऋषि हो ! हेर्नुहोस् भने। सबै ऋषिहरू मिलेर खाल्टामा त्यस लिङ्गको मूल हेर्नका लागि अफ माटो खने ॥१३-१८॥

तीस हातसम्म माटो खन्दा पनि तिनीहरूले शिवलिङ्गको फेद पत्ता लगाएनन्। त्यसपछि उनीहरूले त्यस शिवलिङ्गलाई स्वयम्भू भनेर माने। हे मुनीश्वर हो ! यस लिङ्गको अन्त पत्ता लागेन। त्यसैले यसको नाम अनन्त लिङ्ग हो भन्नुपर्छ। त्यसपछि त्यस खाल्टलाई माटाले छोपेर यो लिङ्ग हो भन्ने निश्चय गरी ऋषिहरूले यस लिङ्गलाई प्रसन्न हुँदै भक्तिपूर्वक पूजा गरे। त्यसै समयदेखि यस लिङ्गलाई ऋषिहरूले तीर्थजल र विभिन्न किसिमका पूजा पूजा सामग्रीद्वारा पूजा गर्ने गरेका छन्। हे विरूपाक्ष ! यस लिङ्गको माहात्म्य फेरि म बताउँछु, सुन - यसै लिङ्गको अनुग्रहबाट अघि कुनै म्लेच्छ मुक्त भएको थियो ॥१९-२३॥

कुनै ब्राह्मण पूर्वजन्मका नीच कर्मले गर्दा उलूकास्य नाम गरेका म्लेच्छ भएर जन्मिएका थिए। ती ब्राह्मणले पूर्वजन्ममा तल्लो आचरण गरेर जे पायो त्यही खान्थे, चोरी गरेर ल्याएको वस्तु लाटोकोसेराले जस्तै रात्रीमा भोजन गर्थे। यसैगरी यिनले विना समय खानेकुरा खाए ॥२४-२६॥

---

३. नान्यथा पशुपो रुद्रो जानीध्वं केवलं द्विजाः, इति न.सं.पु.पाठः।
४. एवं वदन्मिथो विप्रास्ते, इति न.सं.पु.पाठः।
५. गतस्मस्मिन्मुनिः, इति न.सं.पु.पाठः।
६. लिङ्गकोटिं प्रदर्शयत्, इति न.सं.पु.पाठः।
७. अन्ततोऽदर्शितञ्चास्य चास्माभिर्भो मुनीश्वर, इति न.सं.पु.पाठः।
८. अस्मादनन्तलिङ्गोऽयम्भवतु नाम चास्य च, इति न.सं.पु.पाठः।
९. चैतल्लिङ्गम्, इति न.सं.पु.पाठः।
१०. ततः प्रभृति लिङ्गोऽयं मुनितीर्थजलार्चनैः, इति न.सं.पु.पाठः।
११. मुनिभिश्च प्रपूज्यन्ते, इति न.सं.पु.पाठः।
१२. नीचाचारेण यत्तद्वै भक्षितो निशि सोऽग्रजः, इति न.सं.पु.पाठः।

तद्दोषेण च देहान्ते चोलूकास्योऽभवत्पुनः। उलूकवदनो म्लेच्छश्चाऽवात्सीत्कुञ्जपर्वते ॥२७॥
मृगयाजीवको नित्यमत्रैव सञ्चचार सः[१३]। ददर्शैतन्महालिङ्गमृषिभिः पूजितं सदा ॥२८॥
मधोः कृष्णाष्टमीरात्रौ वसन्नत्र श्रमातुरः। नवम्यां सोऽपि च प्रात ऋषितीर्थे जलाप्लुतः ॥२९॥
पत्रपुटोद्धृतैस्तोयैरेतल्लिङ्गमपूपुजत्। अत्रागत्य ह्यसौ लिङ्गमर्चति स्म यथा मुनिः ॥३०॥
वन्यैः पुष्पैर्जलैर्भक्त्या मुखवाद्यैर्ननाम हि। एवमेवाऽर्चितं नित्यमेतल्लिङ्गञ्च तेन वै ॥३१॥
ऋषिवत्[१४] पूजनं प्रेक्ष्य यावत्षण्मासमादितः। प्रत्यक्षोऽग्रेऽभवल्लिङ्गाद्रुद्रस्तस्मै वरं ददौ ॥३२॥
प्रभाते भाद्रकृष्णस्याऽष्टम्यां रुद्रं व्यलोकयत्[१५]। प्रातः काले नवम्याञ्च वरं लब्ध्वा गृहं ययौ ॥३३॥
पूर्णमनोरथो भूत्वा म्लेच्छवृत्तिविवर्जितः। काले प्राप्ते ततो म्लेच्छश्चात्रायातुं पथि व्रजन् ॥३४॥
पञ्चत्वं प्राप्तवान् शैले शतधनुषि दूरतः। तत्रागत्य गणा रौद्राः पुष्पासारमवर्षयन् ॥३५॥
आदध्युः शैवके याने समादृत्य[१६] महोत्सवैः। अनयन्नीशलोकं तं व्योममार्गेण सादरम् ॥३६॥
ते निन्युस्तञ्च शुक्लायामेकादश्यामिषस्य च[१७]। सोऽप्यभवद्गणश्रेष्ठो रुद्रस्याऽनुचरोऽनिशम् ॥३७॥
एतल्लिङ्गप्रसादाद्वै चाऽद्यापि च विरूपदृक्। अतो वारुणदेशे त्वं भूयो गच्छ विरूपदृक् ॥३८॥
ऋष्याश्रममहाकूटे वृक्षपुष्पैः समाकुले। चैत्रस्य कृष्णस्य महानवम्यामुद्भूतलिङ्गस्य माहात्म्यमेतत्।
अनन्तनाम्नोऽस्य हि ते मयोक्तं तत्रैव वक्ष्यामि पुनर्हि यत्तत् ॥३९॥

इति श्रीस्कन्दपुराणे हिमवतखण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायामनन्तलिङ्गस्य माहात्म्यं नाम एकत्रिंशदुत्तरशततमोऽध्यायः ॥१३१॥

---

त्यसै पापले गर्दा मरेपछि उनको मुख लाटोकोसेराको जस्तो भयो। लाटोकोसेराको जस्तो मुख भएको त्यो म्लेच्छ शिकार खेलेर जीविका निर्वाह गर्दै यसै झाडी भएको पर्वतमा सधैँ बस्दथ्यो। वैशाखकृष्ण अष्टमीका दिन राति थाकेर बसेको म्लेच्छले यो महालिङ्ग पूजा गर्न लागेका ऋषिहरूलाई देख्यो। उसले नवमीका दिन यसै ऋषितीर्थमा स्नान गर्‍यो र पातका दुनामा पानी राखेर ल्याई यस लिङ्गको पूजा गर्‍यो। ऋषिहरूले जस्तै यहाँ आएर त्यस म्लेच्छले जङ्गलका फलफूल ल्याई पूजा गर्‍यो र मुखले बाजा बजाउँदै नमस्कार गर्‍यो। ऋषिहरूले पूजा गरेको देखेर सुरुदेखि छ महिनासम्म त्यसले यसरी नै सधैँ यस लिङ्गको पूजा गर्‍यो। लिङ्गबाट अगाडि भगवान् शङ्कर प्रकट हुनुभयो र भाद्रकृष्ण अष्टमीका दिन बिहान शिवको पार्श्ववर्ती भएस् भन्ने वर दिनुभयो ॥२७-३२॥

भाद्रकृष्ण अष्टमीका दिन भगवान् रुद्रको दर्शन गरेपछि नवमीका दिन बिहान उहाँको वर प्राप्त गरेर त्यो म्लेच्छ घर गयो। उसले आफ्नो मनोरथ पूरा गरी म्लेच्छको आचार-विहार परित्याग गर्‍यो। समय आएपछि यसै ठाउँमा आउन लाग्दा बाटमा हिँड्दा हिँड्दै सय धनुष टाढा उसको मृत्यु भयो। त्यहाँ आएर शिवजीका गणहरूले पुष्पवृष्टि गरे र ठूलो उत्सवका साथ उसलाई शिवजीको यानमा राखे। हे विरूपाक्ष ! आश्विनशुक्ल एकादशीका दिन ईश्वरका गणले उसलाई लगे। पछि तिनै म्लेच्छ रुद्रका मुख्य गण भएर रहेका छन् ॥३३-३६॥

हे विरूपाक्ष ! अब तिमी यहाँबाट पश्चिमपट्टि रहेको रुख र फूलहरूले परिपूर्ण ऋष्याश्रम नाम गरेको पर्वतको शिखरमा जाऊ ॥३७॥ चैत्रकृष्ण महानवमीका दिन उत्पन्न अनन्त नाम गरेको यस लिङ्गको यो माहात्म्य मैले तिमीलाई बताएँ। अरु माहात्म्य म फेरि त्यसै ठाउँमा बताउनेछु ॥३७-३९॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवतखण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा अनन्तलिङ्गको माहात्म्यनामक एकसय एकतिसौँ अध्याय पूरा भयो।

---

१३. नित्यमत्रैासञ्चरत्सदा, इति न.सं.पु.पाठः।
१४. ऋषीणाम्, इति न.सं.पु.पाठः।
१५. भाद्रकृष्णाष्टमीप्रातः रुद्रपार्श्वचरो वरम्, इति न.सं.पु.पाठः।
१६. आद्रयन्तम्, इति न.सं.पु.पाठः।
१७. ते वै लोकान् हि शुक्लायामेकादश्यामिषस्य च, इति न.सं.पु.पाठः।

# द्वात्रिंशदुत्तरशततमोऽध्यायः

## वृद्धगङ्गाविश्वरूपेश्वरशिवलिङ्गयोर्माहात्म्यम्

स्कन्द उवाच

भूयोऽगच्छद्विरूपाक्षो मुनिना सह कुम्भज । विश्वरूपेश्वरो यत्र तं प्रणम्यानिशं मुनिम् ॥१॥
वृद्धगङ्गाजले स्नात्वा विरूपाक्षो मुदान्वितः । विश्वरूपेश्वरं लिङ्गमपूपुजद्धि भक्तितः ॥२॥
चैत्रमासे सिते पक्षे नवम्यां भक्तितो द्विजः । अपृच्छन्नेमुनिं रात्रौ तन्माहात्म्यं विनिद्रकः ॥३॥
समाकर्ण्य वचोऽगस्त्य ! विरूपाक्षस्य नेमुनिः । व्याचष्ट वचनं तस्मै तन्माहात्म्यं तदा निशि ॥४॥

नेमुनिरुवाच

आसीद्विप्रो महावृद्धश्चाशीतिवार्षिकः पुरा । श्रुतिगीताभिधानोऽसौ सर्वशास्त्रार्थपारगः ॥५॥
मृते पुत्रे च भार्यायां विरक्तो निःसृतो गृहात् । कृत्वेति जीवनं धिङ् मे क्व गच्छामीति भावयन्[1] ॥६॥
देशाद्देशान्तरं वृद्धो व्रजंस्तीर्थानि वै शनैः । अत्रैव प्राप्तवान् विप्रस्तृषार्तः सोऽभवद् भृशम् ॥७॥
सस्मारात्रैव गङ्गां स जलपानाय कोविदः । तत्र गङ्गा समुद्भूता महातपःस्मृता सती[2] ॥८॥
वैशाखस्य तृतीयायां सस्नौ शुक्लस्य तज्जले । पपौ स तज्जलं विप्रो वृक्षच्छायां समाश्रितः ॥९॥
त्यक्तश्रमोऽचलच्चेतो भोजनार्थं[3] द्विजो वने । एतल्लिङ्गं ददर्शार्य ! फलमूलानि मार्गयन् ॥१०॥
षड्वर्गञ्च परित्यज्य भक्तिपूर्वेण चेतसा । आनर्च विधिवल्लिङ्गं वन्यपुष्पोपहारकैः ॥११॥
गायत्रीं प्रजपन्विप्रो भक्तिभिश्च स्तवार्चनैः । यावदेकसमां विप्रस्त्रिविधैर्विधिभिश्च तत् ॥१२॥

---

## अध्याय – १३२

### वृद्धगङ्गा र विश्वरूपेश्वर शिवलिङ्गको महिमा

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! त्यसपछि विरूपाक्ष नेमुनिलाई साथमा लिएर उहाँलाई नमस्कार गर्दै जहाँ विश्वरूपेश्वर रहनुभएको छ, त्यस ठाउँमा गए । वृद्धगङ्गाको जलमा स्नान गरेर खुसी हुँदै विरूपाक्षले भक्तिपूर्वक विश्वरूपेश्वर शिवलिङ्गको पूजा गरे । चैत्रमासको शुक्लपक्ष नवमीका दिन राति जाग्राम बसेर विरूपाक्षले नेमुनिसित त्यस तीर्थ र लिङ्गको माहात्म्य सोधे । हे अगस्त्य मुनि ! विरूपाक्षको त्यो वचन सुनेर नेमुनिले राति त्यो तीर्थ र लिङ्गको माहात्म्य उनलाई बताउनुभयो ॥१–४॥

नेमुनिले भन्नुभयो – असी वर्षभन्दा बढी उमेर भएका कुनै वृद्ध ब्राह्मण थिए। उनको नाम श्रुतिगीत थियो, सम्पूर्ण शास्त्रमा उनी पारङ्गत भएका थिए। छोरो र पत्नी मरेपछि मेरो जीवनलाई धिक्कार छ, अब म कता जाऊँ भनेर विरक्त हुँदै घरबाट उनी निस्किए। ती बूढा ब्राह्मण एक देशबाट अर्को देशका तीर्थहरू घुम्दै बिस्तारै यस ठाउँमा आइपुगे। ती ब्राह्मण अत्यन्त तिर्खाएका थिए। ती बूढा ब्राह्मणले पानी पिउनका लागि गङ्गालाई सम्झे। उनको महान् तपस्या र सम्झनाले गर्दा गङ्गा त्यसै ठाउँमा गङ्गा उत्पन्न भइन्। वैशाख शुक्ल तृतीयाको दिन उनले तिनै गङ्गाको जलमा स्नान गरे, गङ्गाको जल पिए र रुखको छायामा बसे ॥५–९॥

हे विरूपाक्ष ! विश्राम लिएका ती पूज्य ब्राह्मण भोजनका लागि फलफूल खोज्न वनमा जाँदा उनले यस लिङ्गलाई देखे। काम, क्रोध, लोभ, मोह, मद र मात्सर्यलाई छोडेर भक्तियुक्त चित्तले वनमा उत्पन्न भएका फलफूलहरूद्वारा ती ब्राह्मणले विश्वरूपेश्वर लिङ्गको विधिवत् आराधना गरे। ती ब्राह्मणले गायत्री जपे, तीनै किसिमका भक्तिले युक्त भएर एक वर्षसम्म मुनिहरूका साथ बसेर विश्वरूपेश्वरलिङ्गको स्तुति र पूजा गरे ॥१०–१२॥

---

१. चाब्रुवन्, इति न.सं.पु.पाठः ।
२. महातपःस्मृतेन च, इति न.सं.पु.पाठः ।
३. चात्र चाशनार्थम्, इति न.सं.पु.पाठः ।

वैशाखपूर्णिमायाञ्च तत्पूजनात् श्रुतिश्रवाः। ददर्श विश्वरूपञ्च लिङ्गादस्माद् विनिःसृतम्[४] ॥१३॥
देवः सहस्रशीर्षश्च सहस्राक्षः सहस्रपात्। सहस्रैः सायुधैश्चैव[५] करै राजितविग्रहः ॥१४॥
चन्द्रार्कवह्निनेत्रैश्च वासुकीयज्ञसूत्रतः। सर्वालङ्कारभूषाद्यैर्विश्वरूपो व्यराजत ॥१५॥
प्रणनाम मुहुर्भक्त्या विश्वरूपं श्रुतिश्रवाः। पातयित्वा तनुं भूमौ परिक्रमन्स्तुवन्पुनः ॥१६॥
तस्मिन् रुद्रविमाने तमास्थाय प्रमथाः द्विज। आनिन्युः शिवलोकं वै गीतवाद्यप्रमोदितम् ॥१७॥
भूयः शृणु माहात्म्यञ्च लिङ्गस्यैतस्य[६] विप्रराट्। मुक्तः कश्चित्पुरात्रैव त्रिशिरा नाम पक्षिजः ॥१८॥
आसीद्दीर्घतपा नाम चास्मिन्तीर्थे जलाप्लुतः। सन्ध्यामुपासते दान्तस्तस्थौ सोऽत्र सुनिश्चिलः ॥१९॥
नूनमप्सरसः सप्त[७] तीर्थाटनादिहाययुः। गायन्त्यो भूषिता[८] वाद्यैस्तालमृदङ्गवेणुभिः ॥२०॥
सस्नुरत्र मुदा ता वै वृद्धगङ्गाजले तदा। परित्यज्य च वासांसि वृक्षलतावलम्बने ॥२१॥
जलक्रीडां ततस्ता वै चक्रुर्भृशं मुदा पुनः। प्रक्षेपणैर्जलैस्तीव्रं करपुटेरितैर्मिथः ॥२२॥
दीर्घतपा मुमोहाशु प्रेक्ष्य चेष्टा मनोहराः[९]। तत्क्षणे मन्मथासक्तो[१०] रेतः स त्यक्तवान् तदा ॥२३॥
संस्नायाप्सरसः[११] स्वर्गं गतास्ताश्च ततो मुनिः। प्रययौ स्वाश्रमं शीघ्रं त्यक्त्वा तीर्थं विरूपदृक् ॥२४॥
तद्रेतो हि जले तत्र विराजते सुनिर्मलम्। पक्षिराडत्र भेरुण्डो जलं पातुं तदाययौ ॥२५॥
तद्रेतस्तेन शीघ्रञ्च ह्यप्राशि तत्कलत्रके[१२]। गर्भाधानं ततोऽभूच्च षण्मासं तं दधार सा ॥२६॥

---

वैशाख पूर्णिमाका दिन विश्वरूपेश्वर भगवान्‌को पूजा गरेको हुँदा यसै लिङ्गबाट उत्पत्ति भएका विश्वरूप भगवान्‌को श्रुतिश्रवा(श्रुतिगीत)ले दर्शन पाए। विश्वरूपेश्वर भगवान्‌का हजार शिर थिए, उहाँका हजार आँखा थिए, उहाँको शरीर हजारौँ हतियार लिएका हात र हजारौँ पाउले सुशोभित थियो। चन्द्र, सूर्य र अग्नि उहाँका आँखा थिए, उहाँले वासुकिनागको जनै लगाउनुभएको थियो। सम्पूर्ण गहना र भेषले सुसज्जित भएका विश्वरूप त्यहाँ विराजमान हुनुहुन्थ्यो। श्रुतिश्रवाले भुईंमा शरीरलाई लम्पसार पारेर बारम्बार भक्तिपूर्वक विश्वरूप भगवान्‌लाई नमस्कार गरे, परिक्रमा गरे र स्तुति पनि गरे। प्रमथगणहरूले तिनलाई शिवयानमा राखेर गीत, वाद्यवादन र उत्सवका साथ शिवलोकमा पुऱ्याए ॥१३-१७॥

हे विरूपाक्ष ! यस लिङ्गको माहात्म्य फेरि सुन। अघि यसै ठाउँमा त्रिशिरा नाम गरेको पक्षी मुक्त भएको थियो। यस तीर्थको जलमा स्नान गरेर यहाँ दीर्घतपा नाम गरेका कुनै महात्मा बसेका थिए। उनी निश्चल भएर इन्द्रियहरूलाई वशमा गरी सन्ध्या, पूजा आदि कार्य गर्दथे ॥१८-१९॥

त्यसै समयमा अलङ्कारले सुसज्जित भएका सातवटी अप्सराहरू ताल, मादल, बाँसुरी आदि बाजाहरू बजाउँदै तीर्थयात्राका क्रममा यसै स्थानमा आइपुगे। उनीहरूले आफ्ना कपडाहरू रुख र लहराको कापमा राखेर वृद्धगङ्गाको जलमा प्रसन्न हुँदै स्नान गरे। त्यसपछि उनीहरूले अँजुलीमा पानी लिएर परस्परमा छ्यापछ्याप गर्दै हर्षित भएर खूबसित जलक्रीडा गरे। तिनीहरूको त्यस किसिमको चेष्टा र क्रीडा देखेर दीर्घतपा नाम गरेका ऋषि तुरुन्तै मोहित भए। कामवासनाले पीडित भएर उनको वीर्य तत्कालै स्खलित भयो ॥२०-२३॥

हे विरूपाक्ष ! यसरी वृद्धगङ्गाको जलमा स्नान गरेर ती अप्सराहरू स्वर्गतिर गए। ती ऋषि पनि त्यो तीर्थलाई छोडेर तुरुन्त आफ्नो आश्रमतिर फर्किए। दीर्घतपा ऋषिको त्यो निर्मल वीर्य त्यसै जलमा थियो। कुनै बखत भेरुण्ड नाम गरेको पक्षीको राजा त्यहाँ पानी पिउन आयो। पानी पिउन आएको त्यस पक्षीराजले त्यो वीर्य पनि खायो। पक्षीराजले उसकी पत्नीसँग सहवास गर्दा त्यो वीर्य उसमा पऱ्यो। ऊ चाँडै गर्भवती भई र छ महिनासम्म त्यसले गर्भधारण गरी ॥२४-२६॥

---

४. ह्येतल्लिङ्गात्समुद्भवम्, इति न.सं.पु.पाठः।
५. सहस्रसायुधोपेतैः, इति न.सं.पु.पाठः।
६. सप्ताप्सरोगणा नूनम्, इति न.सं.पु.पाठः।
७. एतल्लिङ्गस्य, इति न.सं.पु.पाठः।
८. भूषाद्या गीतयन्, इति न.सं.पु.पाठः।
९. स्नात्वाप्सरोगणाः, इति न.सं.पु.पाठः।
१०. तच्चेष्टिताश्च ताः, इति न.सं.पु.पाठः।
११. तत्क्षणेऽभूद्विकाराङ्गः, इति न.सं.पु.पाठः।
१२. पक्षिणी तदा, इति न.सं.पु.पाठः।

व्यसृजत्सा ततश्चाऽण्डं निकुञ्जे वृक्षकोपरि। ततः पुनर्विभेदाण्डञ्चञ्चुना समये द्विज ॥२७॥
अभवन्नरदेहोऽसौ त्रिशीर्षो हि च तद्यथा। अपालयच्च भेरुण्डा चाहारपोषणैर्मुहुः ॥२८॥
एवं सा द्वादशाब्दं तं नित्यमपालयत्सुतम्। चञ्चुनखैस्तमुत्थाप्याऽशिक्षड्डयनं मुदा[१३] ॥२९॥
वर्धमानं[१४] तमालोक्य पतन्तं नृशरीरिणम्[१५]। व्याजहाराशु भार्यायै तद्भयकारणं वचः ॥३०॥

पक्षिराडुवाच

कान्ते ! त्यजार्भकस्नेहं नाऽयं खगो विजायते[१६]। किं साधयिष्यति नः कार्यं नाऽस्य रक्षा फलप्रदा[१७] ॥३१॥
कान्ते ! पश्याऽस्य मर्त्याङ्गं नो हन्तारं न संशयः। व्रजावस्त्वरितं त्यक्त्वा चाऽन्यत्रैनं प्रिये ! सुखम् ॥३२॥

नेमुनिरुवाच

सन्त्यज्य बालकं विप्र ! वनान्तरं जगाम सा[१८]। भेरुण्डा श्रीमता सार्द्धं बालोऽसौ निर्जनोऽचरत् ॥३३॥
अत्र ददर्श वेदर्षिश्चरन्तं बालकं वने। त्रिशीर्षं नरदेहञ्च चाऽपृच्छत्तञ्च हेतुकम् ॥३४॥

देव उवाच

को भवानत्र भीष्मे त्वं वने चरसि निर्भयम्। कस्य पुत्रोऽसि भो वत्स ! वद तत्कारणञ्च मे ॥३५॥

त्रिशीर्ष उवाच

पुत्रोऽहं पक्षिराजस्य भेरुण्डागर्भसम्भवः। त्यक्त्वा मां पितरौ चाऽत्र गतौ देशान्तरं किल[१९] ॥३६॥
क्षुत्पिपासार्दितोऽहञ्च त्रिमुखैः पवनाशनैः। क्व गच्छामि न जानामि चोपायं मे वद प्रभो ॥३७॥

---

हे ब्राह्मण ! त्यसरी छ महिनासम्म गर्भधारण गरिसकेपछि लहरै लहराले बेरिएको कुनै रुखमा उसले फुल पारी। समय पूर्ण भएपछि त्यस फुललाई चुच्चाले ठुँगेर कोरल्ने काम गरेकी थिई। त्यस फुलबाट तीन शिर भएको अनौठो मनुष्यशरीरधारी पुरुष पैदा भयो। त्यसलाई पक्षीराज भेरुण्डकी पत्नी भेरुण्डाले पोषण आदि क्रियाबाट पालना गरेकी थिई। यसरी त्यस पुत्रलाई बाह्र वर्षसम्म उसले पालनपोषण गरी। चुच्चा र नङ्गाले उठाएर त्यसलाई उड्न सिकायो। मनुष्यको शरीर भएको हुँदा त्यो उड्न सकेन। अनि त्यसबाट हुने डरलाई सम्झँदै पक्षीराज भेरुण्डले आफ्नी पत्नी भेरुण्डालाई भन्न लाग्यो ॥२७–३०॥

पक्षीराजले भन्यो – त्यो नउड्ने छोरामा प्रेम छोडिदेऊ। यसले हामीहरूको के कार्य सिद्ध गर्ला ! यसको रक्षाबाट ठूलो इच्छापूर्ति हुँदैन। हे प्रिय ! यसले हामीलाई अवश्य नै मार्नेछ। यसको मनुष्य शरीर हेर त ! यसमा शङ्का छैन। त्यसैले हे प्यारी ! यसलाई यसै ठाउँमा छोडेर हामी तुरुन्त अन्यत्र गई सुखपूर्वक बसौँ ॥३१–३२॥

नेमुनिले भन्नुभयो – हे विरूपाक्ष ! त्यसपछि त्यो पक्षीकी पत्नी भेरुण्डा बालकलाई त्यसै ठाउँमा छोडेर आफ्नो पनि भेरुण्डका साथ अन्यत्र गई। बालक एक्लै जङ्गलमा हिँड्न थाल्यो। वनमा घुम्न लागेको तीन शिर भएको मनुष्यशरीरधारी त्यस बालकलाई नारदले देख्नुभयो र त्यसको कारण त्यस बालकलाई सोध्नुभयो ॥३३–३४॥

नारदले भन्नुभयो – हे बाबु ! तिमी को हौ ? तिमी कसका छोरा हौ ? यो डरलाग्दो जङ्गलमा एक्लै घुमिरहेका छौ। त्यसको कारण के हो ? मलाई बताऊ ॥३५॥

तीन शिर भएको त्यस बालकले भन्यो – म भेरुण्डाको गर्भबाट जन्मिएको पक्षीराज भेरुण्डको छोरो हुँ। मेरा आमा–बाबु मलाई यसै ठाउँमा छोडेर अन्यत्र जानुभयो। मेरा यी तीन मुखले वायु मात्र खाइरहेको छु। मलाई भोक र प्यासले सताएको छ। कहाँ जाऊँ, केही थाहा छैन। हे प्रभु ! मलाई कुनै उपाय बताइदिनुहोस् ॥३६–३७॥

---

१३. प्रेरयत्प्रोड्डनाय च, इति न.सं.पु.पाठः।
१४. अनुचरम्, इति न.सं.पु.पाठः।
१५. नरदेहाय खगः, इति न.सं.पु.पाठः।
१६. नोद्गच्छति यतो ह्ययम्, इति न.सं.पु.पाठः।
१७. महेच्छदा, इति न.सं.पु.पाठः।
१८. चान्यत्राममदाशु सा, इति न.सं.पु.पाठः।
१९. चान्यत्रदेशकम्, इति न.सं.पु.पाठः।

देव उवाच

स्नात्वा त्वं वृद्धगङ्गायामेतल्लिङ्गं समर्चय। पञ्चाक्षरं समुच्चार्य शिवशिवेति वै वदन् ॥३८॥
ततः प्राप्स्यसि[२०] रुद्रात्त्वं यदीप्सितं हृदा वरम्। भक्त्या पर्वसु चोपोष्य विधेहि[२१] निशि भोजनम् ॥३९॥

नेमुनिरुवाच

इत्युपदिश्य तस्मै स त्रिशीर्षाय मुनीश्वरः। लिङ्गमभ्यर्च्य वै तद्धि स्वाश्रमं प्रययौ द्विज ॥४०॥
सोऽपि च वृद्धगङ्गायां सस्नौ मधोः कुहौ पुनः। आदाय जलपुष्पाणि लिङ्गमेतदपूपुजत्[२२] ॥४१॥
एवं संवत्सरञ्चैकं व्याप्य लिङ्गं समर्चितम्। वैशाखपूर्णिमायाञ्च ह्याविर्भूतो महेश्वरः ॥४२॥
ददौ तस्मै वरं रुद्रः चिरञ्जीवित्वसाधकम्[२३]। पार्श्वगत्वञ्च तं दत्त्वा लिङ्गे चाऽन्तरभूत् पुनः[२४] ॥४३॥
तमास्थाय गणा रौद्रा निन्युर्याने शिवालये। काले प्राप्ते दिने तत्र वसन्तञ्च त्रिशीर्षकम्[२५] ॥४४॥
सोऽप्यभवद् गणश्रेष्ठो रुद्रपार्श्वचरोऽनिशम्। त्रिशीर्षो नाम विप्रेश ! चाऽद्यापि विचरन्मुदा ॥४५॥
माहात्म्यमेतत्कथितं मयाऽस्य लिङ्गस्य मुक्तस्त्रिशिरास्तथाऽत्र।
तत्सोमलिङ्गस्य विरूप ! वक्ष्ये यस्माद्विमुक्तः शशधृङ् महत्त्वम् ॥४६॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां
वृद्धगङ्गाविश्वरूपेश्वरयोर्माहात्म्यं नाम द्वात्रिंशदुत्तरशततमोऽध्यायः ॥१३२॥

---

नारदले भन्नुभयो – हे बालक ! तिमी शिवजीका पञ्चाक्षर मन्त्र उच्चारण गरी शिव शिव भन्दै वृद्धगङ्गामा स्नान गर अनि यस लिङ्गको पूजा गर। परिश्रम गरेर भक्तिपूर्वक पर्व-पर्वमा उपवास बस, रात्रीमा भोजन गर। शिवजीबाट तिमीले चाहेअनुसारको फल पाउनेछौ ॥३८-३९॥

नेमुनिले भन्नुभयो – हे विरूपाक्ष ! तीन शिर भएको त्यस पक्षीलाई यति भनेर नारदमुनि त्यहाँ रहेको लिङ्गको पूजा गरी आफ्नो आश्रमतिर जानुभयो। वैशाख महिनाको अमावास्याका दिन त्यस पक्षीले पनि वृद्धगङ्गामा स्नान गरी पानी तथा फूल लिएर यस लिङ्गको पूजा गर्‍यो ॥४०-४१½॥

एक वर्षसम्म त्रिशिराले शिवलिङ्गको पूजा गर्‍यो। वैशाखशुक्ल पूर्णिमाको दिन भगवान् शङ्कर त्यहाँ प्रकट हुनुभयो। त्यस पक्षीलाई धेरै कालसम्म बाँच्न पाउने र आफ्नो पार्श्ववर्ती बन्न पाउने वर दिएर अस्ताचलबाट सूर्य अन्तर्धान भएझैँ भगवान् रुद्र पनि अदृश्य हुनुभयो। तीन शिर भएको त्यो पक्षी त्यसै ठाउँमा बसिरहेको थियो। समय पुगेपछि शिवजीका गणहरूले त्यसलाई यानमा राखेर शिवालयमा लगे। हे विरूपाक्ष ! त्रिशिरा पनि सधैँ शिवजीको छेउमा बस्ने गणश्रेष्ठ बन्यो। आजसम्म पनि त्यो पक्षी आनन्दपूर्वक शिवजीका साथ विहार गरिरहेको छ ॥४२-४५॥

हे विरूपाक्ष ! त्रिशिरा मुक्त भएको यस लिङ्गको माहात्म्य मैले तिमीलाई बताएँ। अब चन्द्रमालाई मुक्ति दिने सोमलिङ्गको माहात्म्य पनि म तिमीलाई बताउँनेछु ॥४६॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा वृद्धगङ्गा र विश्वरूपेश्वरको माहात्म्यनामक
एकसय बत्तिसौं अध्याय पूरा भयो।

---

२०. लप्स्यसि, इति न.सं.पु.पाठः।
२१. यत्नेन, इति न.सं.पु.पाठः।
२२. एतल्लिङ्गमपूपुजत, इति न.सं.पु.पाठः।
२३. रुद्रश्चिरञ्जीवत्वपार्श्वगम्, इति न.सं.पु.पाठः।
२४. दत्त्वा चान्तर्दधे लिङ्गे चास्ताद्रौ चैव भास्करः, इति न.सं.पु.पाठः।
२५. त्रयाननम्, इति न.सं.पु.पाठः।

# त्रयस्त्रिंशदुत्तरशततमोऽध्यायः

## सोमलिङ्गमाहात्म्यम्

स्कन्द उवाच

भूयोऽगस्त्याऽगमद्विप्रो मुनिना तेन वै सह। यत्रास्ते सोमलिङ्गं हि दक्षशापविमोचकम् ॥१॥
सोमतीर्थे ततः स्नात्वा लिङ्गं सोऽर्चितवान् हृदा[1]। भक्त्या पञ्चोपचारैः स सर्वभावेन चेतसा ॥२॥

नेमुनिरुवाच

स दक्षेणाभिशप्तोऽभूत् सोमः पूर्वयुगे द्विज ![2]। दुहितृणां स्वकीयानां व्यसनकारणाद् द्विज ॥३॥
सोऽभिभूतस्ततो विप्र ! यक्ष्मणा च महारुजा। दक्षक्रोधोद्भवेनेन्दुः सर्वाङ्गे कुष्ठपीडितः ॥४॥
निष्प्रयत्नोऽभवत्सोमो निस्तेजाश्च रुजार्दितः। जीवशेषो महारोगी क्वापि गन्तुमशक्तवान् ॥५॥
प्रेक्ष्य सोमं रुजार्तञ्च देवास्तत्राययुः पुनः। करवाम वयं किं वाऽब्रूवन् देवा अजादयः[3] ॥६॥
प्रेक्ष्येन्दुं दुःखदग्धास्ते चाऽभूवन् देवता भृशम्। हाहाकारोऽभवत् ज्ञात्वा दक्षशापो हि कारणम्[4] ॥७॥
प्रणम्य च विधिं देवा चाऽपृच्छन्मुक्तिकारणम्। सोमरुजञ्च शापोक्तं श्रुत्वासन् विह्वलाः समे[5] ॥८॥
आकर्ण्य वचनं तेषां देवानां हि ततो विधिः। हेतुज्ञो वचनं तेभ्यो व्याजहार तदा द्विज ॥९॥

ब्रह्मोवाच

शृणु सोम विधास्यामि तच्छापस्य च मोचनम्। येनाऽभिदूषितो देहस्त्वञ्च[6] जीवावशेषितः ॥१०॥
सिद्धपीठे महाक्षेत्रे हिमवत्सानुगह्वरे। पाशुपते च तीर्थाद्ये तत्र व्रजाऽत्रिसम्भव ॥११॥

---

## अध्याय - १३३

## सोमलिङ्गको माहात्म्य

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! अघि दक्षद्वारा दिइएको सरापबाट चन्द्रमालाई मुरक्त तुल्याउने सोमलिङ्ग रहेको ठाउँमा नेमुनिलाई साथमा लिएर विरूपाक्ष आए। त्यसपछि उनले सोमतीर्थमा स्नान गरे र भक्तिपूर्वक पञ्चोपचार विधि अनुसार सर्वतोभावले सोमलिङ्गको पूजा गरे ॥१–२॥

नेमुनिले भन्नुभयो – हे विरूपाक्ष ! अघि आफ्ना छोरीहरूमा चन्द्रद्वारा उत्पादित आपत्तिले गर्दा दक्षप्रजापतिले चन्द्रमालाई सराप दिएका थिए। दक्षप्रजापतिका रीसले सराप पाएका ती चन्द्रमाको शरीर क्षयरोग र कुष्ठरोगले ग्रस्त भयो। तिनका सम्पूर्ण प्रयासहरू विफल भए। रोगले ग्रस्त भएर तेज हरायो। सास मात्र बाँकी रहेका महारोगी ती चन्द्रमा हिँड्नै नसक्ने भए ॥३–५॥

चन्द्रमालाई रोगले पीडित भएको देखेर देवताहरू त्यहाँ आए। त्यो देखेर ब्रह्मा आदि देवताहरूले अब के गर्ने भन्न लागे। चन्द्रमालाई देखेर सबै देवताहरू अत्यन्त दुःखित भए। त्यसको कारण दक्षको सराप हो भन्ने थाहा पाएर उनीहरूले हाहाकार गर्दै सन्ताप प्रकट गरे। विह्वल भएका देवताहरूले ब्रह्माजीलाई नमस्कार गरे। दक्षको सरापबाट पैदा भएको चन्द्रमाको रोगलाई छिट्टै हटाउने उपाय देवताहरूले ब्रह्माजीसित सोधे। हे विरूपाक्ष ! तिनीहरूको वचन सुनेर त्यसको उपाय थाहा भएका ब्रह्माजीले देवताहरूको हितका लागि भन्नुभयो ॥६–९॥

ब्रह्माजीले भन्नुभयो – हे चन्द्रमा! जुन कारणले तिम्रो सासमात्र बाँकी रह्यो। तिमी रोगी भयौ। तिम्रो त्यस सरापलाई हटाउने उपाय म बताउँछु, सुन। हे चन्द्रमा ! हिमालयको शिखरको नजिकै गुफामा तीर्थैतीर्थले भरिएको सिद्धपीठ नाम भएको पशुपतितीर्थ छ, त्यहाँ जाऊ ॥१०–११॥

---

१. सोमलिङ्गं समर्चितः, इति न.सं.पु.पाठः।
२. दक्षेण शापितः सोमः पूर्वयुगे विरूपदृक्, इति न.सं.पु.पाठः।
३. किं कुर्वामश्च कृत्वेति चास्य ब्रुवन्नजादयः, इति न.सं.पु.पाठः।
४. कृत्वा हाहीति तद्धेतुं दक्षशापस्य कारणम्, इति न.सं.पु.पाठः।
५. विह्वलास्तस्य सत्वरम्, इति न.सं.पु.पाठः।
६. हेतु स त्वम्, इति न.सं.पु.पाठः।

कोषगङ्गाजले स्नात्वा पद्मनद्याः सुसङ्गमे। समाराधय शम्भुं त्वं भक्त्या निरशनस्तटे ॥१२॥

विमोक्ष्यति च यक्ष्मा त्वां स्वल्पशेषं विना ध्रुवम्। तच्छापगौरवात्सोम ! सद्य एव न संशयः ॥१३॥

ऋषिरुवाच

इत्याकर्ण्योपदेशन्तं सोमोऽत्राश्वाजगाम हि। प्रणम्य देवता विप्र ! ब्रह्माणञ्च शनैः शनैः ॥१४॥

कार्त्तिकस्य तु शुक्लायामष्टम्याञ्च महातिथौ। उपकरणमादाय स्नातुमत्र समाव्रजत् ॥१५॥

अत्रैव च सुखं सस्नौ सङ्कल्प्य तच्च कारणम्। सद्यो विमोचितं रुग्भिः सर्वतस्तत्कलेवरम् ॥१६॥

दध्यौ चाऽत्र शिवं सम्यग् व्याप्यैकदिव्यवत्सरम्। स्तवार्चनैस्तथा मन्त्रैस्तन्मनस्को हि भक्तितः ॥१७॥

आश्विने मासि पूर्णायामेतल्लिङ्गं महानिशि। उद्भूततेजसाऽत्यन्तं ज्वलद्दीपशिखाकृति ॥१८॥

आविर्भूतो हरो लिङ्गात् सोमं व्याचष्ट सेविनम्[७]। स्तवार्च्चनैस्ततस्तस्य तद्भक्त्या तुष्टवान्विभुः ॥१९॥

रुद्र उवाच

अद्यप्रभृति सोम त्वं कलानिधिर्भवाशु च। यथैव प्रकृतिः पूर्वं स्वल्परुजं विना पुनः ॥२०॥

तच्छापहेतुतः सोम कृष्णपक्षो भविष्यति। लोकाह्लादनहेतोश्च गच्छ व्योम्नि सुखञ्चर ॥२१॥

ऋषिरुवाच

इत्युक्त्वाऽन्तर्दधे लिङ्गं रौद्रं तत्र[८] कलानिधिः। अभूत्सोमस्ततो यज्ञमश्वमेधञ्चकार च ॥२२॥

अत्राययुः सुराः सर्वे हर्षप्रफुल्लमानसाः। आह्लादनञ्च तं प्रेक्ष्य भामिनीभिः[९] समन्तदा ॥२३॥

---

पद्मानदीको सङ्गमस्थल भएको कोषगङ्गा नदीको जलमा स्नान गरेर त्यसैको तटमा उपवास गरी भक्तिपूर्वक शिवजीको आराधना गर। हे चन्द्रमा ! त्यसपछि सरापबाट पैदा भएको तिम्रो क्षयरोग कत्ति पनि बाँकी नरही सबै नाश हुनेछ, यसमा शङ्का छैन ॥१२-१३॥

नेमुनिले भन्नुभयो - हे विरूपाक्ष ! यो कुरा सुनेर चन्द्रमाले देवता र ब्रह्मालाई नमस्कार गरे। ब्रह्माजीले भने अनुसार चन्द्रमा तुरुन्त त्यस तीर्थमा गए। कार्तिकशुक्ल अष्टमीको महातिथिका दिन चन्द्रमा सम्पूर्ण स्नानसामग्रीहरू लिएर स्नान गर्न त्यहाँ आए। यसै ठाउँमा रोगको मुक्तिका लागि सङ्कल्प गर्दै उनले आनन्दसित स्नान गरे। त्यसपछि तुरुन्त उनको शरीर रोगमुक्त भयो ॥१४-१६॥

यसै ठाउँमा बसेर एक दिव्यवर्षसम्म एकचित्तले स्तोत्र, मन्त्र आदि जप्दै, पाठपूजा गरी चन्द्रमाले भक्तिपूर्वक शिवजीको ध्यान गरे। आश्विन महिनाको पूर्णिमाको रातमा तेजले अत्यन्त प्रकाशित दीपशिखाको रूप लिएर यस लिङ्गको आविर्भाव भयो। चन्द्रमाको पूजा, पाठ र भक्तिबाट सन्तुष्ट भएर त्रिलोकव्यापी भगवान् शिव त्यस लिङ्गबाट प्रादुर्भाव हुनुभयो र भक्त चन्द्रमालाई भन्नुभयो ॥१७-१९॥

शङ्करले भन्नुभयो - हे चन्द्रमा ! आजदेखि तिमी कलानिधि भयौ, रोग र शोकबाट मुक्त भएर तिमी पहिलेजस्तै बन्यौ, त्यही सरापको कारणले तिम्रो कला घट्दा कृष्णपक्ष हुनेछ, संसारको कल्याणका निमित्त अब तिमी स्वर्गमा जाऊ र आनन्दसित विहार गर ॥२०-२१॥

नेमुनिले भन्नुभयो - यति भनेर भगवान् शङ्कर त्यसै लिङ्गमा अन्तर्धान हुनुभयो। त्यसपछि कलाका धनी चन्द्रमाले पनि अश्वमेध यज्ञ गरे। अत्यन्त प्रसन्न भएका चन्द्रमालाई देखेर देवताहरू उनलाई भेट्न आफ्ना-आफ्ना पत्नीहरूका साथमा त्यहाँ आए ॥२३॥

---

७. भक्तिने, इति न.सं.पु.पाठः।

८. लिङ्गे रुद्रस्तदा, इति न.सं.पु.पाठः।

९. ह्यङ्गनाभिः, इति न.सं.पु.पाठः।

ततस्तारां ददर्शेन्दू रूपयौवनसुन्दरीम्। सापि ददर्श तं विप्र ! चाऽपाङ्गेन स्मितानना ॥२४॥
एकस्मिन् दिवसे[10] सोमश्चाऽपाङ्गेनाह्वयच्च ताम्। रह आनीय ताराञ्च ह्यकामयद्यथासुखम् ॥२५॥
ततो यज्ञावसाने ते ययुः स्वर्गं मुदाऽमराः। अभिषिच्याऽत्र ते सोमं मन्त्रैर्वाद्यमहोत्सवैः ॥२६॥
कस्मिँश्चिदेव कालान्ते सोमतेजोबलान्वितः। बुधो नामाभवद्विप्र ! ताराया गर्भसम्भवः ॥२७॥
तमालोक्याशु सोमोऽसौ ह्यब्रवीदिति मे सुतः। अर्भकोऽयं सभायां संश्रावयन्सुरवृन्दकम् ॥२८॥
इत्युक्तञ्च समाकर्ण्य बृहस्पती रुषा ज्वलन्। शप्तुं समुद्यतो भूयः सोमाय संसदि ध्रुवम् ॥२९॥
ततो न्यषेधयद् ब्रह्मा सद्यः शापोद्यतं गुरुम्। क्रोधावेगेन[11] सोमाय मा माऽस्मै शप हे ब्रुवन् ॥३०॥
ततोऽपृच्छद्विधिस्तारां बृहस्पतिप्रियाञ्च ताम्। कस्यात्मजोऽर्भकश्चायं तारे तथ्यं वदेति मे ॥३१॥
आकर्ण्य ब्रह्मणो वाक्यं ताराऽब्रवीच्च संसदि। सोमतेजःसमुद्भूतो बालोऽयं तात ! ते नमः ॥३२॥
ततो बृहस्पतिस्तत्र रुषाऽविष्टश्च तत्क्षणे। शापं ददौ स्वभार्यायै पुँश्चली भव सत्वरम् ॥३३॥
माऽबलायै च दातव्यः शापः गुरो कदापि च। इति न्यषेधयन्देवाः बृहस्पतिं तदा द्विज ॥३४॥
सापि स्वर्गादिहागत्य सोमतीर्थजलाप्लुता। ततश्चानर्च तल्लिङ्गमेतद् भक्त्या समर्हणैः ॥३५॥
सापि लेभे च सौन्दर्यं पूर्वस्य त्रिगुणं पुनः। अभूत्प्रियतमा तारा बृहस्पतेर्गरीयसी ॥३६॥
एतल्लिङ्गस्य माहात्म्यं भूयः शृणु वदामि ते। पूर्वं मुक्तोऽत्र गन्धर्वश्चैतस्य हि प्रसादतः ॥३७॥
सभामध्ये स्थिते शक्रे गन्धर्वं समुपस्थितम्। युवानं सुन्दरं प्रेक्ष्य शची स्मितानना‌ऽभवत् ॥३८॥

---

त्यसपछि चन्द्रमाले रूप र यौवनले सुन्दरी भएकी बृहस्पतिकी पत्नी तारालाई देखे। हँसिलो मुख भएकी ताराले पनि चन्द्रमालाई कटाक्षपूर्वक हेरिन्। कुनै दिन चन्द्रमाले आँखा सन्काई तारालाई यहाँ बोलाए र उनीसित एकान्तस्थलमा आनन्दसित विहार गरे। यज्ञ सकिएपछि मन्त्रोच्चारण, वाद्यवादन आदि उत्सवद्वारा चन्द्रमालाई अभिषेक गरेर सबै देवताहरू प्रसन्न हुँदै स्वर्गतिर गए ॥२४-२६॥

केही समयपछि चन्द्रमाको तेजोबलले पूर्ण भएको बुध नामक पुत्र ताराको गर्भबाट उत्पन्न भयो। त्यस बालकलाई देखेर सभामा यो बालक मेरो पुत्र हो भनेर देवतालाई चन्द्रमाले सुनाए। यो कुरा सुन्नासाथ रीसले आगो भएका बृहस्पतिले त्यसै सभामा चन्द्रमालाई सराप दिन खोजे। सराप दिन तयार भएका बृहस्पतिलाई ब्रह्माजीले निषेध गर्दै नबुझीकन चन्द्रमालाई सराप नदेऊ भनेर सम्झाउनुभयो ॥२७-३०॥

त्यसपछि ब्रह्माजीले बृहस्पतिकी पत्नी तारालाई – हे तारा ! यो कसको छोरो हो ? साँचो भन भनी सोध्नुभयो। ब्रह्माजीको कुरा सुनेर ताराले त्यस सभामा भनिन् – यो बालक चन्द्रमाको तेजबाट पैदा भएको हो। हे ब्रह्माजी ! हजुरलाई नमस्कार छ। त्यसपछि बृहस्पतिले रिसाएर तुरुन्त नै 'वेश्या भएस्' भनी आफ्नी पत्नीलाई सराप दिए। 'हे बृहस्पति ! यी अबलालाई सराप नदिनुहोस्' भनेर देवताले बृहस्पतिलाई सराप दिनबाट निषेध गरे। ती तारा पनि स्वर्गबाट यहाँ आइन्। सोमतीर्थमा स्नान गरेर विभिन्न सामग्रीहरू साथमा लिई भक्तिपूर्वक ताराले सोमेश्वर भगवान्को पूजा गरिन्। ताराले पहिलेको भन्दा तीन गुणा बढी सौन्दर्य प्राप्त गरिन् र बृहस्पतिकी प्रियतमा भएर बसिन् ॥३१-३६॥

यस लिङ्गको माहात्म्य म तिमीलाई फेरि बताउँछु, सुन – अघि यसै लिङ्गको अनुग्रहबाट यस ठाउँमा कुनै गन्धर्व मुक्त भएको थियो। इन्द्रमहाराज सभामा बसिरहेको बेला एउटा गन्धर्व आइपुग्यो। सुन्दर युवक त्यस गन्धर्वलाई देखेर इन्द्राणी मुसुक्क हाँसिन् ॥३८॥

---

१०. अत्र कश्चिद्दिने, इति न.सं.पु.पाठः।   ११. आस्याते चैव, इति न.सं.पु.पाठः।

विव्वोकेन स्मितार्द्रेण ददर्श सुस्वरञ्च सा। सोऽपि तथाविधो जातः[१२] समक्षे विबुधद्रुहाम् ॥३९॥
तच्चेष्टां द्यौष्पतिर्ज्ञात्वा सुस्वराय शशाप च। व्रीडाप्रवीडितः क्रोधाद् देवर्षीणाञ्च संसदि[१३] ॥४०॥
रे रे सुस्वर ! मर्त्यस्त्वं भूत्वा मूढ पत ध्रुवम्। अवजानासि मां यस्मात् सभायां त्रिदशालये[१४] ॥४१॥
ततश्च नारदाच्छ्रुवा गन्धर्वोऽसाविहागमत्। तीर्थानां प्रवरं ज्ञात्वा तीर्थं शापविमोचकम् ॥४२॥
सस्नौ तत्र मुदा भक्त्या मुक्तोऽसौ शापदूषणात्[१५]। मूकत्वञ्च जहौ स्नानादभूद्यथा पुरा स्वरः ॥४३॥
कार्त्तिकस्य चतुर्दश्यां शुक्लायां स्नातकः पुनः। एतल्लिङ्गं निशामध्ये भक्त्यापूपुजदर्हणैः ॥४४॥
नित्यमुपासते चैतत् मुखवाद्यैश्च पूजनैः। रुद्रकीर्त्युभवैर्गीतैर्भक्त्या नम्रः परिक्रमन् ॥४५॥
षण्मासाभ्यन्तरे रुद्रो ददौ तस्मै वरोत्तमम्। त्रिनेत्रत्वञ्च श्रेष्ठत्वं[१६] तद्गीततोषितो मुदा ॥४६॥
तमास्थाय विमाने तु निन्युः शैवं गणाश्च वै। अद्यापि सोऽभवद्विप्र ! रुद्रस्यानुचरोऽनिशम् ॥४७॥
भूयो व्रज विरूपाक्ष ! यत्रास्ति गोभराटजः। षट्शतधनुषां दूरे ह्यतो याम्यदिशि ध्रुवम् ॥४८॥

एवन्माहात्म्यं कथितं मया ते, तीर्थस्य सोमाख्यवरस्य विप्र।
लिङ्गस्य चैतस्य पुनर्माहात्म्यम्, वक्ष्यामि चान्यस्य तथाहि तत्र ॥४९॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां
सोमलिङ्गमाहात्म्यं नाम त्रयस्त्रिंशदुत्तरशततमोऽध्यायः ॥१३३॥

---

हे विरूपाक्ष ! इन्द्राणीले सुन्दर एवं युवा त्यस गन्धर्वलाई विलास र मुस्कानका साथ हेरिन्। त्यस गन्धर्वले पनि देवताहरूको माझमा इन्द्राणीलाई त्यसरी नै हेऱ्यो। देवर्षिले युक्त भएको त्यस सभामा लाजले भुतुक्क भएका इन्द्रले रिसाउँदै त्यस गन्धर्वको चेष्टा बुझेर सराप दिए- हे मूर्ख गन्धर्व ! मलाई र यस सभामा उपस्थित भएका देवताहरूलाई जुन कारणले तैँले अपमान गरिस्, त्यसैले तेरो मनुष्ययोनिमा जन्म होस् ॥३९-४१॥

त्यसपछि नारदजीबाट तीर्थहरूमा श्रेष्ठ र सरापलाई हटाउन सक्ने यो सोमतीर्थ उत्तम छ भन्ने थाहा पाएर त्यो गन्धर्व यहाँ आयो। आनन्दसित भक्तिपूर्वक यस तीर्थमा स्नान गरेपछि त्यो गन्धर्व मुक्त भयो र स्नानले गर्दा चाँडै नै लाटेपनलाई छाडेर पहिले जस्तै उसको राम्रो स्वर भयो। कार्तिकशुक्ल चतुर्दशीका दिन त्यसले फेरि त्यहाँ स्नान गऱ्यो। पूजासामग्री लिएर भक्तिपूर्वक त्यसले रातमा शिवलिङ्गको पूजा गऱ्यो। भक्तिले नम्र भएको त्यो गन्धर्व यताउति घुम्थ्यो, बाजा बजाउँथ्यो, पूजा र भजनले सधैँ शिवजीको सेवा गर्थ्यो। छ महिनाको बीचमा प्रमथनाथ त्रिनयन भगवान् शङ्करले उसको गीतबाट प्रसन्न भएर उसलाई उत्तम वर प्रदान गर्नुभयो। शिवजीका गणहरूले त्यस गन्धर्वलाई विमानमा राखेर शिवलोकमा लगे। त्यो गन्धर्व आज पनि शिवजीको सेवक भएर निरन्तर बसिरहेको छ ॥४२-४७॥

हे विरूपाक्ष ! अब तिमी यहाँबाट बाह्र सय गज दक्षिणतिर रहेको क्षेत्रमा जाऊ। त्यहाँ गोभराटेश्वर शिवलिङ्ग रहेको छ। हे विरूपाक्ष ! मैले तिमीलाई सोमतीर्थ र सोमेश्वर लिङ्गको माहात्म्य बताएँ। अरू पनि माहात्म्य म त्यसै ठाउँमा बताउनेछु ॥४८-४९॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा सोमलिङ्गको माहात्म्यनामक
एकसय तेत्तिसौँ अध्याय पूरा भयो।

---

१२. तथाविधं विप्र !, इति न.सं.पु.पाठः।
१३. क्रोधाद्देवर्षिभिः समावृते, इति न.सं.पु.पाठः।
१४. यस्माद्देवसभां त्रिविष्टपात, इति न.सं.पु.पाठः।
१५. सुस्वेदस्तदा, इति न.सं.पु.पाठः।
१६. त्रिनेत्रं प्रमथश्रेष्ठम्, इति न.सं.पु.पाठः।

# चतुस्त्रिंशदुत्तरशततमोऽध्यायः

## गोशृङ्गतीर्थ-गोभराटेश्वरशिवलिङ्गयोर्माहात्म्यम्

### स्कन्द उवाच

भूयोऽगमद्विरूपाक्षो नेमुनिना समं मुने। गोभराटेश्वरो यत्र चक्रनेमिगिरेरधः ॥१॥
मधोः शुक्लस्य विप्रोऽसौ द्वादश्यां स्नातवान्[1] तदा। शृङ्गतीर्थे ततोऽगस्त्य ! गोभराटेशमार्चयत्[2] ॥२॥
सम्पूज्य विधिवल्लिङ्गं भक्त्या पञ्चोपचारकैः। सोऽपृच्छन्नेमुनिं रात्रौ माहात्म्यं तीर्थलिङ्गयोः ॥३॥
व्याजहार शुभं वाक्यं तस्मै च नेमुनिस्तदा। आकर्ण्य तद्वचोऽगस्त्य ! भक्त्या प्रोक्तं महानिशि ॥४॥

### ऋषिरुवाच

पूर्वोक्ता कामधेनुर्या चन्द्रवदद्रिगह्वरे। समास्ते हि सदा सेवमाना तं[3] पशुपेश्वरम् ॥५॥
तस्याः शृङ्गात्समुद्भूता नदी पुण्यतमाभवत्। गोशृङ्गीति समाख्याता तस्मात्सर्वजनैर्द्विज ॥६॥
चक्रावती सरिच्छ्रेष्ठा चक्रनेम्यद्रिसम्भवा। तयोश्च सङ्गमे तीर्थं गोशृङ्गमिति तच्छ्रुतम् ॥७॥
शृङ्गी ऋषिः पुरा तत्र सस्नौ भक्त्या यथाविधि। कामधेनुं ददर्शार्यां पशुपतेः समागताम् ॥८॥
अत्रैव गोमयं त्यक्त्वा[4] चाऽगमत्तद्धि कन्दराम्। शृङ्गिणा गोमयं प्राप्य रुद्रबुद्ध्या समर्चितम्[5] ॥९॥
आषाढस्य चतुर्दश्यां कृष्णायामर्चिते निशि। समुद्भूतं ततो लिङ्गं[6] शृङ्गी ददर्श तैजसम् ॥१०॥
गोभरात्सम्भवो यस्माद् गोभराटेश्वरस्ततः। कृत्वाऽस्य नामधेयञ्च ह्यपूपुजत्समर्हणैः ॥११॥

---

## अध्याय - १३४

### गोशृङ्गतीर्थ र गोभराटेश्वर शिवलिङ्गको महिमा

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! त्यसपछि विरूपाक्ष नेमुनिलाई साथमा लिएर चक्रनेमि पर्वतको फेदीमा रहेको गोभराटेश्वर क्षेत्रमा गए। हे अगस्त्य मुनि ! वैशाखशुक्ल द्वादशीका दिन विरूपाक्षले शृङ्गतीर्थमा गएर स्नान गरे। हे अगस्त्य मुनि ! त्यसपछि उनले गोभराटेश्वर महादेवको पूजा गरे। विधिपूर्वक पञ्चोपचार विधिले सभक्ति लिङ्गको पूजा गरेर विरूपाक्षले राति तीर्थ र लिङ्गको माहात्म्य नेमुनिसित सोधे। हे अगस्त्य मुनि ! राति भक्तिपूर्वक विरूपाक्षले सोधेको वचन सुनेर नेमुनिले तिनलाई कल्याणमय उत्तर दिनुभयो ॥१-४॥

नेमुनिले भन्नुभयो – पहिले चर्चा गरिएकी कामधेनु गाई पशुपतिको सेवा गरेर चन्द्रवत् नाम गरेको पहाडको गुफामा बस्दछिन्। हे विरूपाक्ष ! तिनको सिङबाट अत्यन्त पवित्र नदी उत्पन्न भइन्। सबै मानिसहरूले त्यस नदीलाई गोशृङ्गी भनी नामकरण गरे। चक्रनेमि पर्वतबाट चक्रावती नाम गरेकी उत्तम नदी पैदा भइन्। ती दुई नदीको सङ्गममा रहेको तीर्थ 'गोशृङ्गतीर्थ'का नामले प्रसिद्ध छ ॥५-७॥

अघि शृङ्गी नाम गरेका ऋषिले त्यहाँ विधिपूर्वक स्नान गरे। त्यस अवसरमा उनले पशुपतिको नजिकै पुगेकी पूज्या कामधेनु गाईलाई देखे। ती गाईले त्यहाँ गोब्राइन् र गुफाभित्र पसिन्। ऋषिले त्यस गोबरलाई रुद्रको भावनाले पूजा गरे। आषाढकृष्ण चतुर्दशीको राति गोमयरुद्रको पूजा गरिसकेपछि त्यस गोबरबाट तेजिलो लिङ्ग उत्पन्न भएको शृङ्गी ऋषिले देखे। गोबरबाट उत्पन्न भएको हुँदा त्यस लिङ्गको नाम गोभराटेश्वर राखे र ऋषिले विभिन्न पूजासामग्री लिई पूजा गरे ॥८-११॥

---

१. स्नायते तदा, इति न.सं.पु.पाठः।
२. गोभराटेशमर्चितः, इति न.सं.पु.पाठः।
३. कालं सेवन्ती, इति न.सं.पु.पाठः।
४. त्यज्य, इति न.सं.पु.पाठः।
५. तद्गोमयं समासाद्य रुद्रबुध्या तमर्चितम्, इति न.सं.पु.पाठः।
६. तस्मात्समुद्भवं लिङ्गम्, इति न.सं.पु.पाठः।

सोऽपि लब्धवरः शृङ्गी चैतल्लिङ्गार्चनाद् ध्रुवम्। प्रययौ परमं स्थानं सर्वलोकैः सुदुर्लभम् ॥१२॥
अभून्नपुंसको वैश्यो भ्रष्टः स्वजातितः पुरा। रक्ततेजोमयो जातः[७] तन्मातृपितृदोषतः ॥१३॥
भ्रामं भ्रामं[८] क्षितिं देशान्तीर्थान्यायतनानि च। अत्रैव प्राप्तवान् वैश्यस्तदङ्गमुक्तिकामुकः ॥१४॥
गोशृङ्गाख्ये महातीर्थे सस्नौ विरक्तमानसः। तन्निन्द्याङ्गञ्च सन्त्यक्तुं सङ्कल्प्याशु विरक्तधीः ॥१५॥
तद्योनिं त्यक्तवान् वैश्यो स्नानमात्रेण तज्जले। समुत्तीर्णो जलाद् भूयश्चादर्शत्स्वतनुं शुभाम् ॥१६॥
हर्षविस्फारनेत्रोऽसौ चाऽत्राययौ मुदान्वितः। कस्मादपि मुनेः श्रुत्वा चैतल्लिङ्गं समार्चयत्[९] ॥१७॥
उपहारं ददौ वैश्यः सौवर्णञ्चैव शूलिने। तच्छत्राच्छादितं लिङ्गं सुवर्णच्छत्रमुच्यते[१०] ॥१८॥
द्वादशाब्दं मुदा व्याप्य चैनमपूपुजद् द्विज। गायन् रुद्रयशो वैश्यः भक्त्या नानोपहारकैः ॥१९॥
पौषस्य पूर्णिमायाञ्च निन्युशशिवपुरं विशम्। तमास्थाय महायाने रौद्रा गणा[११] महोत्सवैः ॥२०॥
सैवाभवत्पुनर्विप्र ! रुद्रस्यानुचरोऽनिशम्। महापराक्रमोपेतो नागायुतबलान्वितः ॥२१॥
गोदावर्यां कृतस्नानो जनो भवति सिद्धिराट्[१२]। संवत्सरकृतैः पापैर्मुच्यते नाऽत्र संशयः ॥२२॥
एतत्कुण्डे नरः स्नात्वा कामधेनुञ्च योऽर्चति। सर्वतीर्थमयीं साक्षाज्जलमूर्तिं शृणु द्विज ॥२३॥
अर्के सिंहगते तत्र स्नानात् पुण्यं महत् भवेत्[१३]। कोटितीर्थेषु स्नानाच्च यत्फलं तच्च लभ्यते[१४] ॥२४॥

---

पूजा गरेको प्रभावले गर्दा ती शृङ्गी ऋषि पनि इच्छा अनुसारको वर प्राप्त गरी अत्यन्त दुर्लभ सर्वोत्तम गतिमा पुगे। हे विरूपाक्ष ! अघि आफ्ना आमा र बाबुको दोषले गर्दा कुनै वैश्य जातिबाट च्युत भएर नपुंसक भएको थियो। त्यसको शरीरको वर्ण पनि रातै थियो। पृथ्वी, देश, तीर्थ र देवस्थल घुमेर खिन्न चित्त हुँदै त्यो वैश्य आफ्नो शरीरको मुक्तिका लागि यसै ठाउँमा आयो। आफ्नो निन्दनीय अङ्गलाई त्याग गर्ने सङ्कल्प गर्दै विरक्त बुद्धि भएको त्यस वैश्यले तुरुन्त गोशृङ्ग नाम गरेको महातीर्थमा स्नान गऱ्यो ॥१२-१५॥

त्यस वैश्यले त्यस तीर्थको जलमा स्नान गर्नासाथ त्यस योनिलाई परित्याग गरेको थियो। जलबाट बाहिर निस्किएपछि उसले आफ्नो शरीरलाई सुन्दर बनेको देख्यो। अत्यन्त हर्षित भएर प्रसन्न हुँदै यो वैश्य फेरि यहाँ आयो। कुनै मुनिको मुखबाट महिमा सुनेर उसले यस सोमेश्वर लिङ्गको पूजा गऱ्यो। त्यस वैश्यले भगवान् शङ्करलाई सुनको उपहार दियो। त्यसले चढाएको छाताले यो लिङ्ग ढाकिएको हुँदा यसलाई सुवर्णछत्र पनि भनिन्छ ॥१६-१८॥

हे विरूपाक्ष ! त्यसले बाह्र वर्षसम्म प्रसन्न भएर भक्तिपूर्वक शिवजीको भजन गर्दै विभिन्न उपहारहरू चढाएर शिवलिङ्गको पूजा गऱ्यो। पौषपूर्णिमाको दिन त्यस वैश्यलाई ठूलो आकारको विमानमा राखेर शिवजीका गणहरूले उत्सव गर्दै शिवलोकमा लगे। त्यही वैश्य हात्तीको जस्तो बल र ठूलो पराक्रमले युक्त भएर शिवजीको सेवक भई निरन्तर बसिरहेको छ। हे विरूपाक्ष ! गोदावरी महातीर्थमा स्नान मात्रै गऱ्यो भने पनि एक वर्षसम्म गरेका पापबाट मानिस मुक्त हुन्छ, यसमा शङ्का छैन।

साक्षात् जलमूर्ति र सम्पूर्ण तीर्थस्वरूप भएको गोदावरी कुण्डमा स्नान गरेर जसले कामधेनु गाईको पूजा गर्छ त्यसको फल सुन। सूर्य सिंहराशिमा गएको बेला जसले यस तीर्थमा स्नान गर्छ त्यसलाई साढे तीन करोड तीर्थमा दान गरेको फल प्राप्त हुन्छ। ॥१९-२२॥

---

७. रक्ततेजः समेनार्य !, इति न.सं.पु.पाठः।
८. भ्राम्यमाणः, इति न.सं.पु.पाठः।
९. कश्चिन्मुनिमुखाच्छ्रुत्वा चैतल्लिङ्गं समर्चितम्, इति न.सं.पु.पाठः।
१०. सुवर्णच्छत्र मुच्यतः, इति न.सं.पु.पाठः।
११. रुद्रगणान्, इति न.सं.पु.पाठः।
१२. गोदावरीमहातीर्थे स्नानमात्रेण सिद्धिराट्, इति न.सं.पु.पाठः।
१३. सिंहस्थेऽर्के यदा प्राप्ते विशेषेण तदा पुनः, इति न.सं.पु.पाठः।
१४. तिस्रः कोट्योऽर्द्धकोटीनां स्नात्वा तत्र फलं भवेत्, इति न.सं.पु.पाठ

श्रावणे पूर्णिमायां यः स्नात्वा पूजति शङ्करम् । आजन्म स्वकृतैः पापैर्मुच्यते तत्क्षणाद् द्विज ॥२५॥
चन्द्रवच्छैलमारुह्य चित्रह्रदे नरोत्तमः । संस्नाति[१५] विधिना योऽत्र दशपापैः प्रमुच्यते ॥२६॥
स्नात्वा चन्द्रावतीं देवीं धातुरम्यां प्रणम्य च[१६] । सर्वपापं परित्यज्य चन्द्रलोकं स गच्छति ॥२७॥
तदधो रूपतीर्थे या स्त्रीणां रूपफलप्रदे । संस्नाति पूर्णिमायाञ्च सर्वमासेषु सा शृणु[१७] ॥२८॥
रूपसौन्दर्य्यमाप्नोति सर्वपापैर्विमुच्यते । लोकानां क्षोभिणी भूत्वा पत्युः सा प्रेयसी भवेत्[१८] ॥२९॥
अतो गच्छ विरूपाक्ष ! नैर्ऋत्याख्यां[१९] दिशं ध्रुवम् । योजनार्द्धे मया सार्द्धं यत्र भृङ्गेश्वरो विभुः ॥३०॥

माहात्म्यमेतत् कथितं विरूप ! चाऽस्यैव तीर्थस्य च साम्प्रतं हि ।
तत्रैव वक्ष्यामि च ते महत्त्वं[२०] महाद्भुतं यच्छृणु तत्कथाञ्च ॥३१॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां गोशृङ्गतीर्थगोभराटेश्वरयोर्माहात्म्यं नाम चतुस्त्रिंशदुत्तरशततमोऽध्यायः ॥१३४॥

---

हे विरूपाक्ष ! श्रावणपूर्णिमाको दिन यस कुण्डमा स्नान गरेर जसले शङ्करको पूजा गर्छ त्यो तुरुन्त जन्मभरि गरेको पापबाट मुक्त हुन्छ । चन्द्रवान् नाम गरेको पर्वतमा चढेर चित्रदहमा जसले विधिपूर्वक स्नान गर्छ त्यो दश किसिमका पापबाट मुक्त हुन्छ ॥२३-२६॥

सम्पूर्ण धातुले युक्त हुनाले रमणीय एवं दिव्यगुणसम्पन्न बनेकी चन्द्रावती नाम गरेकी नदीमा स्नान गऱ्यो भने त्यो व्यक्ति सम्पूर्ण पापबाट मुक्त भएर चन्द्रलोक जान्छ । त्यसभन्दा तलतिर स्त्रीहरूलाई सौन्दर्य प्रदान गर्ने रूपतीर्थ छ । सबै महिनाको पूर्णिमाको दिन त्यहाँ स्नान गर्दा प्राप्त हुने फल सुन । जुन स्त्रीले त्यस तीर्थमा स्नान गर्छे, त्यो सम्पूर्ण पापबाट मुक्त हुन्छे, रूप र सौन्दर्यले युक्त भएर दुनियाँलाई मोहित गराउन सक्छे र पतिकी प्रीतिपात्र बन्छे । हे विरूपाक्ष ! यहाँबाट नैर्ऋत्य दिशामा आधा योजन पर भृङ्गेश्वर महादेव हुनुहुन्छ, मसित त्यहाँ हिंड ॥२७-३०॥

हे विरूपाक्ष ! तिमीलाई मैले यस तीर्थको माहात्म्य अहिले नै बताएँ । अरु अद्भुत माहात्म्य र कथा म त्यसै ठाउँमा बताउनेछु ॥३१॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा गोशृङ्गतीर्थ र गोभराटेश्वर शिवलिङ्गको माहात्म्यनामक एकसय चौतिसौं अध्याय पूरा भयो ।

---

१५. स्नायते, इति न.सं.पु.पाठः ।
१६. स्नात्वा चन्द्रवती देवीं सर्वधातुमयीं हि यः, इति न.सं.पु.पाठः ।
१७. तच्छृणु, इति न.सं.पु.पाठः ।
१८. प्रेयसी साऽभवत्पते, इति न.सं.पु.पाठः ।
१९. नैऋत्यस्य, इति न.सं.पु.पाठः ।
२०. माहात्म्यम्, इति न.सं.पु.पाठः ।

# पञ्चत्रिंशत्तमोऽध्यायः

## भृङ्गेश्वरशिवलिङ्गमहिमा

### स्कन्द उवाच

भूयोऽगमद्विरूपाक्षो निशम्य तद्वचो मुदा। तेन सार्द्धं घटोद्भूत ! यत्र भृङ्गेश्वरो विभुः ॥१॥
सिद्धरसे महाकुण्डे सस्नौ भक्त्या यथाविधि। तर्पयित्वा[1] च देवर्षीन् सङ्कल्प्य कुशहस्तकः ॥२॥
सिद्धदेहोऽभवत्सोऽपि भृङ्गेश्वरमपूपुजत्। त्रयोदश्यामुपोष्यार्य चतुर्दश्यां मधोः सिते ॥३॥
सोऽपृच्छन्नेमुनिं भक्त्या तन्माहात्म्यं महानिशि। प्रणम्य शिरसा भूमौ तत्कथाश्रवणोत्सुकः ॥४॥

### विरूपाक्ष उवाच

मुक्तिमार्गप्रदार्येश नमस्तुभ्यं मुनीश्वर। भूयश्च श्रोतुकामोऽहं कथां दिव्यां फलप्रदाम् ॥५॥
वदोद्भूतं कथं[2] लिङ्गमेतन्महावने विभो। पुष्पितैः कुसुमैराढ्ये[3] फलोद्भवद्रुमाकुले ॥६॥

### ऋषिरुवाच

शृणु वत्स प्रवक्ष्यामि यद्वृत्तान्तं पुराऽभवत्। कैलाशशिखरे रम्ये नानारत्नोपशोभिते ॥७॥
नन्दी भृङ्गी सदा द्वारि चेश्वरस्य च तस्थतुः। तद् द्वारं रक्षयन्तौ तौ[4] दण्डपाणी विरूपदृक् ॥८॥
तयोराज्ञां विना तत्र प्रवेष्टुं त्रिदशा अपि[5]। ब्रह्मादयोऽपि विप्रेश ! न शेकुस्ते कदाचन[6] ॥९॥
एकदा दिवसे विप्र ! पार्वत्यै शङ्करो रहः। अपूर्वाञ्च कथां[7] दिव्यामब्रवीद्रत्नमन्दिरे ॥१०॥

---

## अध्याय – १३५

### भृङ्गेश्वर शिवलिङ्गको महिमा

सूतजीले भन्नुभयो – हे शौनक आदि ऋषिहरू ! नेमुनिको भनाइ सुनेर जहाँ भृङ्गेश्वर भगवान् हुनुहुन्छ त्यसै ठाउँमा उहाँलाई साथमा लिएर विरूपाक्ष गए। उनले सिद्धरस महाकुण्डमा स्नान गरे, कुशजल हातमा लिएर सङ्कल्प गरी भक्तिपूर्वक देवता र ऋषिहरूलाई तर्पण दिए। उनको शरीर सिद्ध भयो। विरूपाक्षले वैशाखशुक्ल त्रयोदशीका दिन निराहार बसी चतुर्दशीका दिन भृङ्गेश्वर भगवान्को पूजा गरे। भूमिमा शिर झुकाउँदै विरूपाक्षले नेमुनिलाई नमस्कार गरे। अनि यस लिङ्गका बारेमा सुन्न चाहने ती ब्राह्मणले राति नेमुनिसित त्यस लिङ्गको माहात्म्य भक्तिपूर्वक सोधे ॥१–४॥

विरूपाक्षले भने – मुक्तिको बाटो देखाउने हे मुनिश्रेष्ठ ! हजुरलाई नमस्कार छ। म फेरि फलदायक दिव्य कथा सुन्न चाहन्छु। हे प्रभु ! विभिन्न किसिमका फूलले परिपूर्ण र फलेका वृक्षहरूले व्याप्त यस घना जङ्गलमा भृङ्गेश्वर लिङ्गको उत्पत्ति कसरी भयो ? बताउनुहोस् ॥५–६॥

नेमुनिले भन्नुभयो – हे बाबु ! विभिन्न रत्नले सुशोभित सुन्दर कैलास पर्वतमा जुन वृत्तान्त अघि घटेको थियो, त्यो बताउँछु, सुन। हे विरूपाक्ष ! नन्दी र भृङ्गी नाम गरेको दुईवटा शिवगण भगवान् शङ्करको ढोकामा लट्ठी लिएर रक्षाका लागि पालो बसेका थिए। हे विरूपाक्ष ! ती दुईको आज्ञा नलिईकन ब्रह्मा आदि देवताहरू पनि कहिल्यै त्यहाँभित्र पस्न सक्दैनथे। हे विरूपाक्ष ! एक दिन भगवान् शङ्करले रत्नमन्दिरको एकान्तस्थलमा दिव्य एवं अपूर्व कथा पार्वतीलाई भन्न लाग्नुभयो ॥७–१०॥

---

१. सन्तर्प्य स, इति न.सं.पु.पाठः।
२. कथ वदोद्भवम्, इति न.सं.पु.पाठः।
३. नानापुष्पप्रफुल्लाढ्ये, इति न.सं.पु.पाठः।
४. रक्षयन्नित्यम्, इति न.सं.पु.पाठः।
५. देवास्तत्रान्तरे प्रवेशितुम्, इति न.सं.पु.पाठः।
६. शेकुञ्च कदापि ते, इति न.सं.पु.पाठः।
७. अपूर्वकथाम्, इति न.सं.पु.पाठः।

ईश्वर उवाच

शृणु देवि प्रिये मत्तो यद्वृत्तान्तञ्च देहिनाम्। सुरासुरा न जानन्ति मम मायाविमोहिताः ॥११॥
सेवन्ते तव पादाब्जं त एव ज्ञानिनो विदुः। त्वत्सेवनेन सिद्धास्ते[८] जानन्ति योगिनो हि ते ॥१२॥
ससर्ज्जादावपो ब्रह्मा लब्ध्वा शक्तिं तव प्रिये। ततश्च मेदिनीं बीजं जन्तून् भूतैश्च पञ्चभिः[९] ॥१३॥
तद्बीजानां समाहारैस्ततो जीवन्ति देहिनः। प्राप्नुवन्ति क्रमात् पुष्टिं बलबुद्धिपराक्रमान् ॥१४॥
मायया मोहिता ये च देवि ! ते प्राणिनोऽनिशम्। त्वां च मङ्गलरूपां मां न जानन्ति कदाचन ॥१५॥

ऋषिरुवाच

तस्मिन्नवसरे भृङ्गी परित्यज्य हि नन्दिनम्[१०]। विवेशाभ्यन्तरे तत्र भृङ्गरूपेण गोपितः[११] ॥१६॥
तयोश्च यत्र संवादः पार्वतीपरमेशयोः। पूर्वमभूद्विरूपाक्ष ! तत्सर्वमशृणोद्धि सः ॥१७॥
तद्वृत्तान्तं समादाय भृङ्गी निर्गत्य सत्वरम्[१२]। जयायै स्वप्रियायै च रहोवृत्तं न्यवेदयत्[१३] ॥१८॥
व्यतीते तद्दिने देवी तत्राहूय च मातृकाः। अवोचत्ततदा ताभ्यो यदुक्तं शूलिना रहः ॥१९॥
आदरेण समाहूय पङ्क्तिक्रमेण मातृकाः। स्वान्तिके च चतुर्दिक्षु स्वासने चोपवेशयत् ॥२०॥

देव्युवाच

हे जये विजये साध्वि धर्मेऽधर्मे च मातृकाः। यदुक्तं गिरिशेनार्याः तच्छृणुष्व रहो निशि ॥२१॥
यद्वृत्तान्तं रहस्यञ्च देवासुराश्च मातृकाः। न जानन्तीह तद्वक्ष्ये प्रोक्तं रुद्रेण मे रहः ॥२२॥

ऋषिरुवाच

एवं हि कथयन्त्याञ्च देव्यां ताः शुश्रुवुस्तदा[१४]। जयाऽवदत् सभामध्ये विलङ्घ्य तद्वचो द्रुतम् ॥२३॥

---

महादेवले भन्नुभयो – हे देवी ! हे मेरी प्रिया ! मेरो मायाबाट मोहित भएर देवता र राक्षसले पनि जुन कुरा जान्दैनन्, त्यो वृत्तान्त म तिमीलाई बताउँछु, सुन। जुन महात्मा ज्ञानी योगीहरूले तिम्रो पाउरूपी कमलको सेवा गर्छन्, तिनै सिद्ध आत्मा भएका योगी पुरुषहरूले मात्र यो वृत्तान्त जान्न सक्दछन्। तिम्रो शक्ति पाएर ब्रह्माजीले सबैभन्दा पहिले पानीको सृष्टि गरे। त्यसपछि पृथिवी, बीज र पञ्चभूतका साथै प्राणीको सृजना गरे। त्यसै बीजको समूहबाट प्राणीहरू बाँच्दछन्, क्रमैसँग पुष्ट हुन्छन् र बलबुद्धि तथा पराक्रम पाउँछन्। हे देवी ! ती सबै प्राणीहरू मेरो मायाले निरन्तर मोहित भएका छन्। कल्याणस्वरूप मलाई उनीहरूले कहिल्यै पनि जान्दैनन्, अर्थात् चिन्दैनन् ॥११-१५॥

नेमुनिले भन्नुभयो – हे विरूपाक्ष ! त्यसै बखतमा ढोकामा नन्दीलाई छोडेर भृङ्गी भ्रमरको रूप लिएर शिव-पार्वतको संवाद भएको स्थलमा प्रवेश गरे। उनले ती सबै कुरा सुने। त्यो वृत्तान्त लिएर भृङ्गी बाहिर निस्किए। आफ्नी पत्नी जयालाई एकान्तमा भएको त्यो वृत्तान्त बताए। त्यो दिन बितेपछि पार्वतीले मातृका देवीहरूलाई बोलाएर शिवजीले आफूलाई जुन कुरा बताउनुभएको थियो, त्यो कुरा तिनीहरूलाई भन्नुभयो। पार्वतीले बडो सम्मानका साथ ती मातृकाहरूलाई बोलाउनुभयो र आफ्नो नजिकै चार दिशामा रहेका आसनमा पङ्क्तिबद्ध क्रमले राख्नुभयो ॥१६-२०॥

देवीले भन्नुभयो – जया, विजया, साध्वी, धर्मा र अधर्मा नाम गरेका हे मातृका हो ! शिवजीले एकान्तमा मलाई जुन कुरा बताउनुभयो, सुन – जुन गोप्य कुरा देवता र दानवहरूले पनि जान्दैनन्, त्यो कुरा मलाई शिवजीले बताउनुभएको छ, त्यो कुरा म बताउँछु ॥२१-२२॥

नेमुनिले भन्नुभयो – पार्वतीले यसरी भनेको मातृकाहरूले सुनिरहेका थिए। त्यसैबेला सभाको बीचबाट पार्वतीको कुरा काट्दै भृङ्गीकी पत्नी जयाले भनिन् ॥२३॥

---

८. सिद्धात्मान्, इति न.सं.पु.पाठः।
९. जन्तून्पञ्चात्मकैस्ततः, इति न.सं.पु.पाठः।
१०. नन्दिनं त्यज्य सांप्रतम्, इति न.सं.पु.पाठः।
११. पक्षिणा, इति न.सं.पु.पाठः।
१२. वै तदा, इति न.सं.पु.पाठः।
१३. अकथयद्रहो हि यत्, इति न.सं.पु.पाठः।
१४. एवं हि कथ्यमानायां देव्यां ताः श्रावतन्तदा, इति न.सं.पु.पाठः।

जयोवाच

तव चरणपद्मस्य चाराधनं विनाम्बिके। न जानन्ति श्रियं मोक्षं त एव योनिजाः सदा ॥२४॥
आवयोर्मायया ये ये विमुखास्ते विमोहिता[१५] । इति किं नैव प्रोक्तं ते रहसि शूलिनाऽम्बिके ![१६] ॥२५॥

ऋषिरुवाच

विसृज्य मातृका देवी ययौ शिवान्तिकं द्रुतम्। विस्मिता सा रहोवृत्तं ज्ञानं जया कथं वदेत्[१७] ॥२६॥
चित्तेन साऽब्रवीत्[१८] देवी तया प्रोक्तञ्च शूलिने। चित्रेण चेतसा तत्तद् जयायाश्चेष्टितं द्विज ॥२७॥

देव्युवाच

प्रभो यद् भवता प्रोक्तं रहस्यमिति मे प्रभो। तद्वृत्तान्तं सभामध्ये तथैव च जयाऽब्रवीत् ॥२८॥

ऋषिरुवाच

श्रुत्वा तद्वचनं देव्याश्चेश्वरः सत्त्वरं तदा। ध्यात्वाऽब्रवीच्च तद्देव्या कथं ज्ञातमिति ब्रुवन् ॥२९॥
आहूय भृङ्गिणं शीघ्रं[१९] शशाप तत्क्षणाद्धि तम्। रुषाविष्टो महादेवो द्वाःस्थमपि विरूपदृक् ॥३०॥

ईश्वर उवाच

छन्दोवृत्तिं समाधाय भूत्वा मे द्वारपालकः। प्रविष्टश्च[२०] रहः स्थानं यद्वृत्तान्तं शृणोषि भोः ॥३१॥
रहो वृत्तान्तमादाय जयायै कथितं त्वया। कृत्वेति मे प्रिया भार्या भृङ्गिन् त्वं कितवोऽसि च ॥३२॥
यस्माद्रहःप्रवृत्तिर्मे भृङ्गिन् ! प्रोक्ता त्वया च यत्। स्वप्रियायै ह्यतो भ्रष्टस्तस्मात्त्वं मानुषो भव ॥३३॥

ऋषिरुवाच

श्रुत्वा शापं तदा भृङ्गी वेपथुविग्रहोऽभवत्। प्रणम्याश्रुमुखो रुद्रमप्रार्थयद्विमोचनम् ॥३४॥

---

जयाले भनिन् – हे पार्वती ! हजुरको पाउरूपी कमलको आराधना नगरीकन विभिन्न योनिमा जन्मिएका प्राणीहरूले कहिल्यै कल्याण र मोक्षका बारेमा ज्ञान गर्न सक्दैनन्। तपाईंको र शिवजीको मायाद्वारा सम्पूर्ण ती प्राणीहरू मोहित भएका छन्। यही कुरा तपाईंलाई शिवजीले एकान्तस्थलमा भन्नुभएको हो ॥२४–२५॥

नेमुनिले भन्नुभयो – हे विरूपाक्ष ! त्यो कुरा सुनेर चकित भएकी पार्वती तुरुन्तै मातृकालाई त्यसै ठाउँमा छोडेर जयाले त्यो वृत्तान्त कसरी जानी भन्ने कुरा मनमा खेलाउँदै शिवजीको नजिकमा जानुभयो ॥२६–२७॥

पार्वतीले भन्नुभयो – हे प्रभु ! तपाईंले जुन रहस्यमय कुरा मलाई बताउनुभएको थियो, त्यही वृत्तान्त सभामा त्यसरी नै जयाले भनी ॥२८॥

ऋषिले भन्नुभयो – हे विरूपाक्ष ! पार्वतीको त्यो कुरा सुनेर शिवजीले तुरुन्तै ध्यानदृष्टिबाट यो कुरा कसरी जयाले थाहा पाई भनेर विचार गर्नुभयो। त्यसपछि रीसले युक्त हुनुभएका शिवजीले भृङ्गीलाई बोलाउनुभयो र आफ्नो महलमा पाले बसेको भए तापनि तिनलाई सराप दिनुभयो ॥२९–३०॥

शिवजीले भन्नुभयो – हे भृङ्गी ! मेरो पाले भएर आफ्नो भेष बदली भमराको रूप लिएर तैँले मेरो गोप्य कुरा सुनिछन्, त्यो गोप्य वृत्तान्त तैँले आफ्नी पत्नी जयालाई भनिछस्। त्यसैले तँ छली होस्। जुन कारणले मेरो गोप्य कुरा तैँले आफ्नी प्रियालाई भनिस्, त्यसै कारणले तैँले यहाँबाट भ्रष्ट भएर मनुष्ययोनिमा जन्म लिनु परोस् ॥३१–३३॥

नेमुनिले भन्नुभयो – त्यो सरापलाई सुनेर भृङ्गी थर्थरी काँपे। आँखाभरि आँसु पारेर शिवजीलाई नमस्कार गरे र सरापको मुक्तिका लागि अनुरोध गरे ॥३४॥

---

१५. सर्वं तद्विमुखैर्विमोहितम्, इति न.सं.पु.पाठः।
१६. इत्युक्तञ्च हि ते देवि ! रहसि शूलिनाम्बिके, इति न.सं.पु.पाठः।
१७. अद्भुतात्मा कथं ज्ञानं तद्धि कृत्वेति चेतसा, इति न.सं.पु.पाठः।
१८. अब्रवीत् सहसा, इति न.सं.पु.पाठः।
१९. त्वरितं भृङ्गी, इति न.सं.पु.पाठः।
२०. प्रवेशितः, इति न.सं.पु.पाठः।

भृङ्गी उवाच

क्षमस्व भगवान्देव चागांसि मे ह्यजानतः। अज्ञेनैव कृतं यत्तद् क्षन्तव्यं विभुनानिशम् ॥३५॥
रजोमूढात्मने मे त्वं शापान्तं ब्रूहि शङ्कर। कैतवं संश्रितेनेश तत्कृतञ्च मया ततः ॥३६॥

रुद्र उवाच

हिमवद्गह्वरेऽरण्ये नानापुष्पोपशोभिते। करवीराभिधाने भो तत्र प्रतप्यतां मयि ॥३७॥
शताब्दान्ते ततो दिव्ये शापान्ते सति वै मम[२१]। दास्यामि ते वरं नूनं मत्पार्श्वस्थो भविष्यसि[२२] ॥३८॥

ऋषिरुवाच

आकर्ण्य तद्वचो भृङ्गी कैलाशाच्च विनिर्ययौ। भूत्वा मानुषरूपोऽसौ विहाय देवविग्रहम् ॥३९॥
भूत्वा मुनिर्मुनिश्रेष्ठः सर्वसत्त्वदयाकरः। षट्कर्मसु रतो नित्यं वेदाध्ययनतत्परः ॥४०॥
अध्यास्ते चात्र भृङ्गी वै प्रेक्ष्य वनं मनोहरम्। पुष्पफललतोपेतं करवीरोपशोभितम् ॥४१॥
तेपे भृङ्गी भृशञ्चात्र रुद्राराधनतत्परः। कुण्डलिनि ह्रदे स्नात्वा षट्कर्मनिरतः शुचिः ॥४२॥
भूत्वाऽसौ निश्चलो भृङ्गी जजाप तन्मनुं हृदा। व्याप्य द्वादशदिव्याब्दं त्रिविधाभिश्च भक्तिभिः[२३] ॥४३॥
वैशाखपूर्णिमायाञ्च लिङ्गस्यास्य समुद्भवः[२४]। राजते पुरतस्तस्य ज्योतिर्मयं महानिशि ॥४४॥
प्रेक्ष्य लिङ्गं तदा भृङ्गी हर्षप्रफुल्लमानसः। प्रचक्रमे मुदा स्तोतुं परिक्रम्यार्चयन्पुनः ॥४५॥

---

भृङ्गीले भने – हे भगवान् ! नजान्ने मूर्खले गरेको अपराधलाई क्षमा गर्नुहोस्। मैले नजानीकन जुन काम गरेँ, हजुरले त्यसमा क्षमा गरिदिनुपर्छ। रजोगुणले गर्दा मूढबुद्धि भएर छल गरी जुन काम मैले गरेँ र सराप पाएँ त्यस सरापबाट मुक्त हुने उपाय बताउनुहोस् ॥३५–३६॥

महादेवले भन्नुभयो – हे भृङ्गी ! विभिन्न थरी फलफूलले सुशोभित करवीर नाम गरेको गुफामा गएर मलाई प्राप्त गर्नका लागि तिमी तपस्या गर। दिव्य सय वर्ष पुगेपछि तिम्रो सरापको अन्त्य हुनेछ। म तिमीलाई अघिजस्तै पार्श्ववर्ती बन्ने वर दिनेछु ॥३७–३८॥

नेमुनिले भन्नुभयो – शिवजीको वचन सुनेर भृङ्गी आफ्नो देवस्वरूपलाई त्यसै ठाउँमा छोडी मानिसको रूप लिएर कैलाशबाट निस्किए। करवीरक्षेत्रमा बसेर ती भृङ्गीले सधैँ सबै प्राणीमा दया गर्थे, षट्कर्म गर्दथे, वेद पढ्थे। यसरी फलफूलले पूर्ण भएको करवीरले सुशोभित त्यस जङ्गलमा ती भृङ्ग शिवजीका उपासना गरी बसिरहेका थिए ॥४०–४१॥

कुण्डली नाम गरेको तलाउमा स्नान गरेर पवित्र भई षट्कर्म गर्दै शिवजीको आराधनामा तत्पर भएका ती भृङ्गीले त्यहाँ तपस्या गरे। पूर्ण दिव्य बाह्र वर्षसम्म निश्चल भएर भृङ्गीले तीनै किसिमका भक्तिको उपयोग गरी प्रसन्न हुँदै शिवजीको मन्त्र जपे। वैशाखपूर्णिमाको महारात्रिमा भृङ्गीको अगाडि एउटा ज्योतिर्मय लिङ्ग उत्पन्न भयो ॥४४॥ त्यस लिङ्गलाई देखेर प्रसन्न भएका भृङ्गीले लिङ्गको परिक्रमा गरे र खुसी हुँदै स्तुति गरे ॥४२–४५॥

---

२१. भृङ्गिन्वै मम, इति न.सं.पु.पाठः।
२२. मत्पार्श्वस्थं यथा पुरा, इति न.सं.पु.पाठः।
२३. भक्त्या च त्रिविधैर्मुदा, इति न.सं.पु.पाठः।
२४. एतल्लिङ्गं समुद्भवम्, इति न.सं.पु.पाठः।

भृङ्गी उवाच

ॐ नमः शिवाय शान्ताय भूतानां पतये नमः। ज्योतीरूपाय देवाय महालिङ्गाय वै नमः ॥४६॥

क्षितिरूपाय रुद्राय नमः पानीयरूपिणे। तेजोरूपाय भीमाय श्वसनमूर्त्तये नमः ॥४७॥

व्योमरूपाय भर्गाय जीमूतरूपिणे नमः। सर्वौषधिस्वरूपाय बीजरूपाय वै नमः ॥४८॥

रसाय रसरूपाय चैतन्याय नमो नमः। जीवाय बुद्धिरूपाय जीवेश्वराय वै नमः ॥४९॥

वाग्रूपाय च शब्दाय प्रणवाय स्वराय च। वेदाय वेदरूपाय ह्यक्षराय नमो नमः ॥५०॥

वन्द्याय सर्ववन्द्याय स्वयमप्रणतदेहिने। नमोऽस्तु सर्वरूपाय स्वयमेवाप्रणाशिने ॥५१॥

मन्मुक्तिहेतुना चाद्य प्रादुर्भूतोऽसि शङ्कर ![२५] । प्रणतोऽस्मि सदा तुभ्यं[२६] वरदायानिशं नमः ॥५२॥

भृङ्गीश्वराय लिङ्गाय चाव्यक्तायात्मने नमः। व्यक्ताव्यक्तस्वरूपाय सर्वलक्ष्याय वै नमः ॥५३॥

ऋषिरुवाच

इत्याकर्ण्य स्तवं रुद्रो भृङ्गिभक्तीरितं तदा। आविर्भूय ततो लिङ्गाद्[२७] व्याचष्ट वचनं मुदा ॥५४॥

भृङ्गेश्वर उवाच

भो भृङ्गिन् ! मम भक्तोऽसि तुष्टोऽहं त्वत्स्तवैर्भृशम्। त्वदीयां प्रेक्ष्य भक्तिञ्च कठोरचरितं तथा ॥५५॥

भवेदद्यैव[२८] शापान्तो मम लोके प्रयास्यसि। मद्द्वारि तिष्ठ भृङ्गिन् मां सेवमानो[२९] पुरा यथा ॥५६॥

अत्र सिद्धमयीं गङ्गामेतत्कुण्डे च पश्यसि। मां स्नापयाऽनिशं भृङ्गिन् ! सिद्धरसेन साम्प्रतम् ॥५७॥

स्नापयति सकृत् यो मां रसेनानेन साधकः[३०] । सदेहोऽसौ विमानेन मम लोकं गमिष्यति ॥५८॥

---

भृङ्गीले भने – हे शान्तस्वरूप भएका शिवजी ! हजुरलाई नमस्कार छ। प्राणीका स्वामीलाई नमस्कार छ। ज्योतिस्वरूप महालिङ्ग भएका देवतालाई नमस्कार छ। पृथ्वीरूप लिने र जलस्वरूप भएका रुद्रलाई नमस्कार छ। वायुमूर्ति र तेजोरूप भीमलाई नमस्कार छ। आकाश, तेज र मेघस्वरूप शिवलाई नमस्कार छ। सम्पूर्ण औषधिस्वरूप भएका बीजरूप शिवलाई नमस्कार छ। रसनशील रसरूप भएका चैतन्यलाई नमस्कार छ। बुद्धिरूप भएका जीव र जीवेश्वरलाई नमस्कार छ। वाणीरूप लिने शब्द, प्रणव, स्वर, वेदरूप र अक्षरलाई नमस्कार छ, बारम्बार नमस्कार छ। सबैका वन्द्यस्वरूप भएका, सबै प्राणीद्वारा नमस्कृत, आफू कसैसित नझुक्ने र अविनाशी स्वरूप भएका सम्पूर्ण जगत्स्वरूपका शिवलाई नमस्कार छ। हे अविनाशी शङ्कर ! हजुर मेरो मुक्तिका लागि उत्पन्न हुनुभएको छ। वरदाता हजुरलाई सविनय नमस्कार गर्दछु। अव्यक्त आत्मा भएका, व्यक्ताव्यक्त स्वरूपले युक्त र सर्वलक्षणसम्पन्न भृङ्गीश्वर लिङ्गलाई म नमस्कार गर्दछु ॥४७–५३॥

नेमुनिले भन्नुभयो – भृङ्गीले भक्तिपूर्वक गरेको स्तुति सुनेर त्यस लिङ्गबाट शिवजी प्रादुर्भाव हुनुभयो र भन्नुभयो ॥५४॥

भृङ्गीश्वरले भन्नुभयो – हे भृङ्गी ! तिमी मेरा भक्त हौ, तिमीले गरेको स्तुति, तिम्रो भक्ति र कठिन आचरण देखेर म अत्यन्त प्रसन्न भएँ। हे भृङ्गी ! आजदेखि तिम्रो सरापको अन्त्य भयो, मेरो लोकमा जाऊ, मेरो ढोकामा बस, अघिजस्तै मेरो सेवा गर। हे भृङ्गी ! यस कुण्डमा सिद्धगङ्गालाई देख्नेछौ, अब मलाई सिद्धरसले स्नान गराऊ। यस सिद्धरसले जसले मलाई एकपटक मात्रै भए पनि स्नान गराउनेछ, त्यो व्यक्ति आफ्नो शरीरैसित विमानमा चढेर मेरो लोकमा जानेछ ॥५५–५८॥

---

२५. मन्मुक्तयेऽधुना हेतोरुद्भवोऽसि महेश्वर, इति न.सं.पु.पाठः।

२६. सदाऽज त्वाम्, इति न.सं.पु.पाठः।

२७. लिङ्गादाविर्भवन् तस्मै, इति न.सं.पु.पाठः।

२८. अद्यैव तव, इति न.सं.पु.पाठः।

२९. त्वं सेवयन्माम्, इति न.सं.पु.पाठः।

३०. एतद्रसेन यो मां वै सकृदपि स्नापयिष्यति, इति न.सं.पु.पाठः।

यो मां पश्यति पुण्यात्मा ह्यर्चनेनैव भक्तितः। पूर्वदेहोद्भवैः पापैः स मुक्तो नाऽत्र संशयः ॥५९॥
विशेषेण कलौ प्राप्ते गङ्गा गुप्ता भविष्यति। मम स्पर्शनमात्रेण सिद्धो भवति तत्क्षणात् ॥६०॥

ऋषिरुवाच

इत्याज्ञां स समाधाय सिद्धरसैः प्रसूनकैः। आनर्च्च विधिवल्लिङ्गं भक्त्या भृङ्गी मनुं स्मरन् ॥६१॥
मुनयोऽत्र समागत्य निर्माय पीठिकामिमाम्। मृण्मयेन तमानर्चुर्नानापुष्पैश्च तज्जलैः ॥६२॥
तज्जलस्पर्शनाद्वेदी चाऽभूद् ग्रावमयी तदा। तल्लिङ्गस्पर्शनान्मुद्रा ताम्रा स्वर्णमयी ह्यभूत् ॥६३॥
अद्राक्षुर्मुनयो मुद्रास्ताम्राः स्वस्वकरे स्थिताः। स्वर्णमय्यस्तदैतत् ते सिद्धलिङ्गञ्च मेनिरे ॥६४॥
एतल्लिङ्गस्य माहात्म्ये कथ्यमाने गणा ययुः। मुनिवृन्दैः सभायां वै रौद्रा विमानपाणयः ॥६५॥
उदतिष्ठन् तदा प्रेक्ष्य व्योमयानं समागतम्[३१]। रुद्रगणैः समानीतमम्बरात्सूर्यतैजसम्[३२] ॥६६॥
मुमुदिरे समुत्प्रेक्ष्य मुनयो यानमागतम्। नेतुमायाति[३३] मां स्वर्गं मिथोऽब्रुवन्धियेति ते ॥६७॥
तेषां चेष्टां समालोक्य गणा ऊचुश्च सत्वरम्। विमानपाणयो व्योम्नि न्यषेधयँश्च तान् द्विज ॥६८॥

गणा ऊचुः

यूयं तिष्ठत तत्रैव मोत्तिष्ठत मनागपि[३४]। आगमनस्य नो हेतुं शृणुत मुनयोऽधुना ॥६९॥
शतवर्षञ्च दिव्यानां भृङ्गी चाऽत्रैव संस्थितः। रुद्रशापात्स चैकाकी रुद्रद्वार[३५] विहाय च ॥७०॥
तदर्थमागताश्चाऽत्र वयं रुद्राज्ञया विभो। एनं प्रापयितुं शैवमपरं नास्ति कारणम्[३६] ॥७१॥

---

जुन पवित्र आत्मा भएको मानिसले मलाई पूजा र भक्तिद्वारा सेवा गर्छ त्यो व्यक्ति पूर्वजन्ममा गरेको पापबाट मुक्त हुन्छ, यसमा सन्देह छैन। विशेष गरेर कलियुगमा यी सिद्धमय गङ्गा गुप्त हुनेछिन्। मलाई स्पर्श मात्रै गऱ्यो भने पनि त्यो व्यक्ति तुरुन्त सिद्ध हुनेछ ॥५९-६०॥

नेमुनिले भन्नुभयो - शिवजीको आज्ञा अनुसार भृङ्गीले सिद्धरस र फूलहरू ल्याएर भक्तिपूर्वक मन्त्र सम्झदै विधिपूर्वक त्यस लिङ्गको पूजा गरे। ऋषिहरू त्यहाँ आए, माटोले त्यस लिङ्गको पीठिका बनाए, विभिन्न किसिमका फूल र पानी ल्याएर त्यस लिङ्गको पूजा गरे। सिद्धगङ्गाको जलको स्पर्शले गर्दा वेदी शिलामय बन्यो। लिङ्गको स्पर्शले गर्दा तामाको मुद्रा पनि सुवर्णमुद्रामा परिणत भयो ॥६१-६३॥

ऋषिहरूले आ-आफ्ना हातमा लगाएको तामाको औंठीलाई सुनको औंठी भएको देखे। त्यसपछि उनीहरूले त्यस लिङ्गलाई सिद्धलिङ्ग हो भनेर निश्चय गरे। ती मुनिहरूले यस लिङ्गको माहात्म्य बताउन थालेका थिए, त्यसै बेला त्यहाँ विमान लिएर शिवजीका गणहरू आए। आकाशबाट सूर्यजस्तै तेजिलो विमान लिएर आउन लागेका शिवजीका गणहरूलाई देखेर ती ऋषिहरू उठे। विमान आएको देखेर मुनिहरू खुसी भए र स्वर्गबाट मलाई नै लिन आएका हुन् भनी आपसमा कुराकानी गर्न थाले। हे विरूपाक्ष ! तिनीहरूको चेष्टा देखेर विमानमा रहेका गणहरूले तिनीहरूलाई बुझाउँदै त्यसो होइन भनेर निषेध गरे ॥६४-६८॥

गणहरूले भने - हे मुनि हो ! तपाईंहरू यस ठाउँमा बस्नुहोस, नउठ्नुहोस्। हामी किन आयौं, त्यो कुरा सुन्नुहोस्। शिवजीको सरापले गर्दा उहाँको ढोकालाई छाडेर भृङ्गी एक्लै यस ठाउँमा दिव्य सय वर्षसम्म बसेका छन्। भगवान् शङ्करको आदेश अनुसार शिवभक्त भृङ्गीलाई लिन हामी यहाँ आएका हौं भन्ने सम्झनुहोस्, अरू कुनै कारण होइन ॥६९-७१॥

---

३१. उदतिष्ठन्तदा ते वै प्रेक्ष्य विमानमागतम्, इति न.सं.पु.पाठः। ३२. ...सूर्यवर्चसम्, इति न.सं.पु.पाठः।
३३. उत्प्रेक्ष्य मुनयो यानमागतं मुमुदुस्तदा। आनयितुञ्च, इति न.सं.पु.पाठः। ३४. मामार्या उदतिष्ठत, इति न.सं.पु.पाठः।
३५. तदद्वारञ्च, इति न.सं.पु.पाठः। ३६. एनमानयितुं शैवं विद्धि नास्त्यपरं हि तत्, इति न.सं.पु.पाठः।

ऋषिरुवाच

इत्युक्त्वा तं विमाने ते संस्थाप्य[३७] बहुमानतः। निन्युः शैवं मुदा शैवा द्योतयन्तो दिशोऽम्बरात्[३८] ॥७२॥
ऋषयोऽपि महालिङ्गमुपासन्तेऽत्र नित्यशः। भृङ्गरूपाः कलौ देवाः सेवन्ते सर्वपर्वसु ॥७३॥
आसीत्कश्चिन्नृपो विप्र ! नहुषो नाम विश्रुतः। उड्डीशायां कृतं राज्यं तेन दानं कृतं बहु[३९] ॥७४॥
तत्सुकृतप्रभावात्सः स्थायी चेन्द्रासनेऽभवत्। विप्रोद्वाहविमानेन चाययौ गगनान्मुदा ॥७५॥
हिमवत्सानुमुद्दिश्य स्वर्गसोपानविश्रुतम्। अत्रापि प्रेरिता विप्रा नृपेण च सकौतुकम्[४०] ॥७६॥
क्रुद्धास्ते मुनयस्तस्य साहङ्कारकटूक्तिभिः[४१]। भारोद्वाहश्रमस्विन्ना[४२] भाराक्रान्ताः कदापि न ॥७७॥
तस्मै शापं ददुर्विप्राः सर्पो भवेति सत्वरम्। अपततदत्र राजाऽसौ चाऽजगरोऽभवद् भुवि ॥७८॥
धनुषां द्विसहस्रेण दीर्घोऽभूत्सर्पविग्रहः। स्पर्शनादस्य तीर्थस्य सर्पो ज्ञानी बभूव सः[४३] ॥७९॥
जीवामीति सहस्राब्दं महादेवप्रसादतः। अवात्सीदत्र सर्पोऽसौ लिङ्गभूमिञ्च वेष्टयन्[४४] ॥८०॥
अत्राययौ च तं प्रेक्ष्य ग्रहीतुं गरुडो द्रुतम्। भृङ्गी ह्युवाच तार्क्ष्याय रुषा तस्य जिघांसवे[४५] ॥८१॥

नेमुनिले भन्नुभयो – यति भनेर ती शिवका गणहरूले भृङ्गीलाई बडो सम्मानका साथ विमानमा राखे। दिशाहरूलाई उज्यालो तुल्याउँदै आकाशमार्गबाट शिवजी भएको ठाउँमा लगे। ऋषिहरूले पनि यस महालिङ्गको सधैँ उपासना गर्न थाले। त्यसै समयदेखि कलियुगमा भमराको रूप लिएर देवताहरूले सबै पर्वमा यस लिङ्गको सेवा गर्छन्। नहुष नाम गरेका कुनै प्रसिद्ध राजा थिए। दानी ती राजा उडिशा नाम गरेको देशमा शासन गर्दथे ॥७२-७४॥

हे विरूपाक्ष ! भृङ्गीश्वरकै उपासना-धर्मका प्रभावले ती राजा स्थायी रूपले इन्द्रासनमा बसे। आकाशबाट ब्राह्मणहरूले हाँकेको विमान लिएर प्रसन्न हुँदै त्यहाँ आए। स्वर्गको सिँढीको नामले ख्यातिप्राप्त भएको हिमालय पर्वतको शिखरमा पुगेर ती राजाले ब्राह्मणहरूलाई कौतूहलका साथ शिविका वहन गर्न आदेश दिए। भारवहनको श्रमले गर्दा पसिनै पसिना भएका ती ब्राह्मणहरू भारको परिश्रमले भन्दा पनि ती राजाको मनै घोच्ने तीखो बोलीले रिसाए ॥७५-७७॥

ब्राह्मणहरूले तिनलाई तुरुन्त सर्प भएस् भनेर सराप दिए। राजा अजिङ्गर भएर भुइँमा पछारिए। ती राजाले दुई हजार धनु बराबर लामो सर्पको शरीर लिएका थिए। यस स्थानको स्पर्शले गर्दा फेरि तिनलाई ज्ञान प्राप्त भयो। महादेवको अनुग्रहबाट हजार वर्षसम्म बाँच्न पाउँछु भन्ने निश्चय गरेर त्यो सर्प लिङ्गको नजिकै रहेको भूमिमा गुडुल्किएर बसेको थियो। त्यस सर्पलाई देखेर कुनै गरुड समात्न आयो। त्यसलाई मार्न तत्पर भएको गरुडलाई देखेर भृङ्गीले रिसाएर भने ॥७८-८१॥

३७. आस्थाय, इति न.सं.पु.पाठः।
३८. द्योतयन्कुकुभोऽम्बरात्, इति न.सं.पु.पाठः।
३९. नानादानं ददाति वै, इति न.सं.पु.पाठः।
४०. तदुत्सुको नृपो द्रुतम्, इति न.सं.पु.पाठः।
४१. अजीजनद् रुषा तेषां तत्प्रयुक्तकटूक्तिभिः, इति न.सं.पु.पाठः।
४२. भाराक्रान्ताश्रमस्विन्ना, इति न.सं.पु.पाठः।
४३. एतत्थानस्पृशात्सर्पो ज्ञानयुक्तोऽभवत्पुनः, इति न.सं.पु.पाठः।
४४. लिङ्गोपभूमिवेष्टयन्, इति न.सं.पु.पाठः।
४५. तद्वधप्रोद्यते रुषा, इति न.सं.पु.पाठः।

भृङ्गी उवाच

रे रे तार्क्ष्य महामूढ ! मा मागच्छेति[४६] चाऽत्र वै। सर्पं प्रेक्ष्य प्रलोभात्ते चागमनं किमस्ति ते[४७] ॥८२॥
स्पृशसि यदि तं तार्क्ष्य ! विस्मृत्याऽपि त्वमत्र चेत्[४८]। क्रोधेक्षणेन सद्यस्त्वां भस्मसात्स करिष्यति ॥८३॥
पुण्यभूमौ शिवस्थाने यो वा को वा प्रतिष्ठति। अवध्योऽसौ हि सर्वेषां न स पापैः प्रलिप्यते ॥८४॥
सहस्रवत्सरान्ते च ह्यस्य मृत्युर्भविष्यति। एतत्क्षेत्राद्बहिर्यावन्न याति चेत् भुजङ्गमः[४९] ॥८५॥

ऋषिरुवाच

इत्युक्तञ्च समाकर्ण्य तार्क्ष्योऽसौ भृङ्गिणा तदा। तद्ध्रदप्रान्तरेऽवात्सीत्तच्छिद्रेक्षणतत्परः ॥८६॥
सहस्रवत्सरान्ते हि तत्स्थानाद् स बहिर्गतः[५०]। क्षुधया पीडितोऽत्यन्तं ग्रस्तुञ्च प्राणिनः शनैः ॥८७॥
तद्बहिर्विचरन्तं तं प्रेक्ष्य तार्क्ष्योऽग्रहीद् द्रुतम्। अदम्यया सर्पशक्त्या[५१] प्रोत्सारितो व्यलोडयत् ॥८८॥
ततस्तार्क्ष्यो रुषाविष्टः चञ्चुना च नखैरहिम्। व्यचूर्णयद्विदार्याशु खण्डखण्डं कृता तनु ॥८९॥
ततस्तद्विग्रहात्सद्यः पुरुषोऽसौ प्रनिःसृतः। दिव्यकलेवरो राजा चाऽत्र निधनपुण्यतः ॥९०॥
रुद्रयाने तमास्थाय चाऽनयच्छिवमन्दिरम्। नानावाद्यैर्गणा हर्षगीतनृत्यैः प्रमोदितम् ॥९१॥

---

भृङ्गीले भने – हे मूर्ख गरुड ! यहाँ नआइज। तँ यस सर्पलाई देखेर लोभले अथवा अरु कारणले यहाँ आएको हो ? मलाई बता। हे गरुड ! बिर्सिएर पनि तैँले यस सर्पलाई स्पर्श गरिस् भने भगवान् शङ्करले तँलाई क्रोधको आँखाले तुरुन्त खरानी तुल्याउनुहुनेछ। पुण्यभूमि शिवजीको स्थानमा जोसुकै पनि रहन सक्छ। त्यो पापरहित हुन्छ। त्यो सबैको अवध्य हुन्छ। यस क्षेत्रभन्दा बाहिर निस्कियो भने त्यस पापीको हजार वर्षपछि मात्र मृत्यु हुनेछ ॥८२-८५॥

नेमुनिले भन्नुभयो – भृङ्गीले यस्तो कुरा भनेको सुनेर गरुड त्यस सर्पको छिद्र खोज्दै त्यस तलाउको नजिकै गएर बस्यो। हजार वर्ष बितेपछि भोकले आत्तिएर प्राणीहरूलाई खान त्यो सर्प त्यस ठाउँबाट निस्कियो। छिद्रबाट बाहिर डुलिरहेको त्यस सर्पलाई देखेर गरुडले झम्टियो। गरुडलाई पनि सर्पको अदम्य बलले गर्दा त्यससँग धेरै बेरसम्म लडिरहनुपर्‍यो। त्यसपछि रीसले चूर भएको गरुडले आफ्नो चुच्चो र नङ्ग्राले त्यस सर्पलाई पृथ्वीमा पछारेर टुक्रा टुक्रा पार्‍यो ॥८६-८९॥

त्यसपछि त्यस शरीरबाट तुरुन्तै दिव्य शरीर भएको पुरुष प्रकट भयो। यहाँ मरेको हुँदा ती सर्परूप राजा नहुषले दिव्य शरीर लिए। तिनलाई विमानमा राखेर शिवजीका दूतहरूले सहर्ष गीत र नृत्यद्वारा आनन्दित तुल्याउँदै शिवजीको मन्दिरमा लगे ॥९१॥

---

४६. मा गच्छसि, इति न.सं.पु.पाठः।
४७. वदाशु मे, इति न.सं.पु.पाठः।
४८. यच्चैनं स्पर्शनात्तार्क्ष्य ! त्वमत्र विस्मृतेन च, इति न.सं.पु.पाठः।
४९. नाचरतेऽस्य पापिनः, इति न.सं.पु.पाठः।
५०. हि समुच्चरत, इति न.सं.पु.पाठः।
५१. सर्पबलोद्धतेनाऽसौ, इति न.सं.पु.पाठः।

सिद्धरसे नरः स्नात्वा सिद्धो भवति तत्क्षणात्। कुण्डलिनीह्रदे स्नानात्सर्पभयैर्विमुच्यते ॥९२॥
वैशाखपूर्णिमायां य एतल्लिङ्गं प्रपश्यति। आजन्मसञ्चितैः पापैर्मुच्यते तत्क्षणाद्धि सः ॥९३॥
कदाचिद्दैवयोगेन भाग्यवानेनमर्चति। इहलोकं परित्यज्य प्राप्नोति परमं पदम् ॥९४॥
यो वा को वा समागत्य प्राणत्यागं करोति च। न पुनर्जायते योनौ शिवलोके वसेत्सुखी ॥९५॥
एतन्माहात्म्यं कथितं मया ते भृङ्गीश्वरस्यार्य पुनः शृणु त्वम्।
मतं त्रिलिङ्गस्य वरं महत्त्वं बिभ्राजमानो ललितावने वै ॥९६॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां
भृङ्गीश्वरमाहात्म्यं नाम पञ्चत्रिंशत्तमोऽध्यायः ॥१३५॥

---

सिद्धगङ्गाको सिद्धरसमा स्नान गऱ्यो भने मानिस तुरुन्तै सिद्ध हुन्छ। कुण्डली नाम गरेको तलाउमा स्नान गऱ्यो भने सर्पको डरबाट मुक्त हुन्छ। वैशाखपूर्णिमाको दिन जसले यस लिङ्गको स्पर्श गर्छ त्यो व्यक्ति जन्मभरि गरेका पापबाट तुरुन्त मुक्त हुन्छ। दैवसंयोगले गर्दा कुनै भाग्यमानीले यहाँ आएर यस लिङ्गको पूजा गऱ्यो भने त्यसले यो लोक छोडेपछि परमपद प्राप्त गर्छ। जोसुकैले पनि यस ठाउँमा आएर प्राण छोड्यो भने त्यो व्यक्ति कुनै योनिमा जन्म नलिईकन शिवलोकमा गएर सुखसित वास गर्छ ॥९२-९५॥

यस भृङ्गेश्वर लिङ्गको माहात्म्य मैले तिमीलाई बताएँ। अब ललिता नाम गरेको वनमा विराजमान त्रिलिङ्ग शिवजीको माहात्म्य छ, त्यो मबाट सुन ॥९६॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा भृङ्गीश्वरशिवलिङ्गको माहात्म्यनामक
एकसय पैंतिसौं अध्याय पूरा भयो।

# षट्त्रिंशदुत्तरशततमोऽध्यायः

## मुनिकुण्डतीर्थ–त्रिलिङ्गेश्वरयोर्महिमा

### स्कन्द उवाच

ततोऽगमद्विरूपाक्षो मुनिना सह कुम्भज। सुरम्ये ललितारण्ये चोत्तरस्यां दिशि ध्रुवम्[१] ॥१॥
मुनिकुण्डे पुनः स्नात्वा त्रिलिङ्गेशमपूपुजत्। दिव्ये च ललितारण्ये भक्त्या नानाप्रसूनकैः ॥२॥
पूर्णिमायां ततो रात्रौ लिङ्गमभ्यर्च्य भक्तितः। तन्माहात्म्यं विरूपाक्षो ह्यपृच्छन्नेमुनिं पुनः ॥३॥
आकर्ण्य तद्वचो रात्रौ चाऽसौ मुनिर्घटोद्भव। व्याजहार शुभं वाक्यं भक्ताय[२] भक्तवत्सलः ॥४॥

### ऋषिरुवाच

राजमानं वनं पश्य वाग्वत्या याम्यतो दिशि। क्रोशयुग्मप्रमाणेन प्रभावत्यास्तथोत्तरे ॥५॥
नानापुष्पैर्द्रुमै रम्यं लताभिर्ललितं वनम्। मयूरैः कोकिलैर्भृङ्गैः सत्त्वानाञ्च मनोहरम् ॥६॥
बिल्वपनसजम्बीरैर्दाडिमैर्बीजपूरकैः। आम्रैः पूगैश्च खर्जूरैः सुललितं मनोहरम् ॥७॥
नानापक्षिगणध्वानैः केकाभिर्भृङ्गगुञ्जनैः[३]। निकुञ्जैर्लसितं यस्माल्ललितारण्यमाश्रुतम् ॥८॥
गवयैर्हस्तिभिर्व्याघ्रैरक्षोभिर्वानरैर्वृकैः। हरिणैः कृष्णसारैश्च विविधैर्ललितं[४] मृगैः ॥९॥
अवतीर्यामरावत्याश्चाऽत्र देवाङ्गना[५] मुदा। अक्रीडन् कुसुमैः शश्वन् निकुञ्जेषु निरन्तरम्[६] ॥१०॥
ऋषयश्च सहस्राणि वसन्ति स्म तपोधनाः। कतिचिच्च यजन्तोऽत्र धूम्राशिनः फलाशिनः ॥११॥
आराधितो महादेवस्तत्रत्यैश्च महर्षिभिः। सार्धं स्कन्देन देव्या च जपाग्निहोमतर्पणैः[७] ॥१२॥

---

## अध्याय – १३६

### मुनिकुण्डतीर्थ र त्रिलिङ्गेश्वरको महिमा

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! त्यसपछि विरूपाक्ष नेमुनिलाई साथमा लिएर त्यस ठाउँबाट उत्तर दिशामा रहेको ललितारण्यमा गए। फेरि दिव्य ललितारण्यमा रहेको मुनिकुण्डमा स्नान गरेर उनले विभिन्न किसिमका फूलहरूद्वारा भक्तिपूर्वक त्रिलिङ्गेश्वर भगवान्को पूजा गरे। पूर्णिमाको दिन राति भक्तिपूर्वक लिङ्गको पूजा गरेर विरूपाक्षले नेमुनिसित त्यस लिङ्गको माहात्म्य सोधे। हे अगस्त्य ! तिनको भनाइ सुनेर राति भक्तवत्सल नेमुनिले विरूपाक्षसित कल्याणमय वचन भन्न लाग्नुभयो ॥१–४॥

नेमुनिले भन्नुभयो – वाग्वती नदीको दक्षिणदिशा र प्रभावती नदीको उत्तरपट्टि सुहाएको हुँदा यो सुन्दर जङ्गल छ, हेर। विभिन्न किसिमका फूल, वृक्ष, लहरा, मयूर, कोइली, भमरा आदि प्राणीहरूले गर्दा यो वन अत्यन्त मनोहर भएको छ। बेल, कटहर, जामुनो, दारिम, ज्यामिर, आँप, सुपारी, खजुर आदि मीठा फलहरूले शोभित भएको हुँदा यो वन अत्यन्त सुन्दर छ। मयूरको मीठो स्वर, भमराको आवाज, अनेक किसिमका पक्षीहरूको नानाथरी गानाले गुञ्जित भएको यो वन अत्यन्त सुशोभित छ । त्यसैले यसलाई ललितारण्य भनिन्छ ॥५–८॥

लतागृह, साना गाई, हात्ती, बाघ, भालु, बाँदर, ब्वाँसो, मृग आदिले युक्त भएको हुँदा यो वन अत्यन्त सुन्दर बनेको छ। अमरावतीबाट ओर्लिएर अप्सराहरूले खुसीसँग यस सुन्दर बगैंचामा बसेर फूलहरूका साथ खूबसित क्रीडा गरेका थिए। यहाँ हजारौं तपस्वी ऋषिहरू धुवाँ र फलमात्र खाएर बसेका थिए भने केही ऋषिहरू यज्ञ गरेर बस्दथे। तिनै महर्षिहरूले कार्तिक स्वामीसहित देवी र महादेवको जप, होम, तर्पण र पूजा गरेर आराधना गरे॥९–१२॥

---

१. तस्माद्धि दिशि चोत्तरे, इति न.सं.पु.पाठः।
२. भक्तिने, इति न.सं.पु.पाठः।
३. .....भृङ्गनादितैः, इति न.सं.पु.पाठः।
४. अन्यैश्च, इति न.सं.पु.पाठः।
५. सुराङ्गना, इति न.सं.पु.पाठः।
६. वसन्भृशम्, इति न.सं.पु.पाठः।
७. देव्या कुन्देन सार्द्धञ्च द्वितीयस्नातकेर्षया, इति न.सं.पु.पाठः।

पौषकृष्णतृतीयायामेतल्लिङ्गं प्रकाशितम्[८]। लिङ्गत्रयात्मकं रात्रौ ताभ्याञ्च युगपत्समम् ॥१३॥
एतल्लिङ्गाद्वरं लब्ध्वा ध्यायमानो मुनिः शिवम्। किञ्चित्कालान्तरे तेन प्रलब्धं परमं पदम् ॥१४॥
शृणु वच्मि विरूपाक्ष एतल्लिङ्गप्रशंसनम्। कश्चित्पापी विलीनो[९]ऽभूदेतस्मिँश्च पुरा शिवे ॥१५॥
आसीत्कश्चिद् द्विजः पूर्वं क्वनिखङ्गसुतो द्विज। तालजङ्घश्च नाम्नासौ सर्वभुग् वेदवर्जितः ॥१६॥
पूर्वजन्मविपाकेन चौरवृत्तिं समाव्रजन्। अत्रावात्सीद्वने भीष्मे चौरोऽसौ निर्जनो रहः ॥१७॥
हत्वा वा प्राणिनो मर्त्यान् यत्र कुत्र गृहे वने। तद्द्रव्याणि समादाय बुभुजेऽत्र सुखं यथा ॥१८॥
मार्गकृष्णचतुर्दश्यां गोपालं वनमध्यगम्। दुग्धभारसमाक्रान्तं जघान पत्त्रिणाऽशु सः ॥१९॥
दुग्धभारं समादाय चाऽत्राययौ द्रुतं हि सः। भाण्डञ्च तरुशाखायां स्थापयित्वा व्यलोडयत्[१०] ॥२०॥
लिङ्गप्रतिहताङ्घ्रिश्च सहसा[११] चकितेक्षणः। मध्याह्ने च चतुर्दश्यां वृक्षस्याधो विराजितः[१२] ॥२१॥
तल्लिङ्गं दुग्धभाण्डञ्च सदुग्धं पर्यपातयत्[१३]। तत्क्षीरेण सुखं लिङ्गं संसस्नौ भिन्नभाण्डतः ॥२२॥
अनन्तरञ्चतुर्दश्यां प्रत्यक्षं मुमुदे शिवः[१४]। तत्क्षीरेण त्वशेषेण प्रेक्ष्यापि भक्तिवर्जितम् ॥२३॥
तल्लिङ्गस्पर्शनात्सोऽपि किञ्चिज्ज्ञानयुतोऽभवत्। एवमेव स्थितो विप्रः स्थगितगतिविह्वलः ॥२४॥
एतत्क्षीरेण मे रुद्रः प्रसन्नोऽस्तु[१५] सदाशिवः। गृहाण शङ्करेदं मे चाङ्गं त्वं प्रतिवर्द्धय ॥२५॥
इत्युक्त्वा प्रणनामेशं परिक्रम्य सवृक्षकम्। एतत्कोटरमाविश्य चाशीशयत्क्षुधार्दितः ॥२६॥
अमावास्यातिथौ प्रातस्तालजङ्घो ममार सः। कालवशात्क्षुधार्त्तो हि शिवशिवेति संवदन् ॥२७॥

---

पौषकृष्ण तृतीयाको मध्यरातमा ती दुबैका साथ एकैचोटि यस लिङ्गबाट तीनवटा लिङ्ग प्रकट भए। यस लिङ्गबाट वर पाएर शिवजीको ध्यान गर्ने मुनिले केही समयपछि परमपद प्राप्त गरे। हे विरूपाक्ष ! म यस लिङ्गको माहात्म्य बताउँछु, सुन। अघि कुनै पापी यसै शिवलिङ्गबाट मुक्त भएको थियो ॥१३-१५॥

हे विरूपाक्ष ! अघि क्वनखङ्ग नाम गरेका कुनै ब्राह्मण थिए। उनको तालजङ्घ नाम गरेको छोरो थियो। वेदले प्रतिपादन गरेको कर्म न गर्ने त्यो सर्वभक्षी थियो। पूर्वजन्मको कर्मले गर्दा त्यसले चोरको वृत्तिलाई अँगाल्यो। यो चोर सधैं यस डरलाग्दो वनमा आएर एकान्तमा एक्लै बस्दथ्यो। प्राणीहरू र मानिसहरूलाई जताततै घर वा वनमा मारेर प्राणीहरूको मासु र मानिसहरूको धन ल्याई आनन्दसित त्यो उपभोग गर्दथ्यो ॥१६-१८॥

त्यसले मार्गकृष्ण चतुर्दशीका दिन दूध बोकेर वनको माझमा हिँडिरहेको गोठालालाई बाण हानेर माऱ्यो। दूधको घडा लिएर तुरुन्त त्यो चोर यहाँ आयो र त्यस तस्करले रुखमुनि लगेर दूधको भाँडो हल्लायो। चतुर्दशीको मध्याह्नमा उसको गोडाले अचानक लिङ्ग छुन पुग्यो। अत्यन्त हर्षित हुँदै त्यो आश्चर्यचकित भयो। दूधले भरिएको त्यो भाँडो लिङ्गमाथिबाट खस्यो र फुटेको भाँडाबाट पोखिएको दूधले शिवलिङ्गको स्नान भयो ॥१९-२२॥

त्यसपछि चतुर्दशीका दिन भक्ति नभए पनि सम्पूर्ण दूध पोखिएर शिवलिङ्गको स्नान हुन गएको हुँदा भगवान् शङ्कर प्रसन्न हुनुभयो। त्यस लिङ्गलाई स्नान गराएको हुँदा त्यो पनि केही ज्ञानी भयो। यसरी नै हिँड्न चल्न नसकेर अचेत भएर बस्यो। "हे रुद्र ! यो दूधले तपाईं प्रसन्न हुनुहोस्, यसलाई ग्रहण गरेर मेरो अङ्ग बढाइदिनुहोस्" यति भनी भोकले पीडित भएको त्यस ब्राह्मणले शिवजीलाई परिक्रमा गरी रुखको टोड्कानिर बसेर पुकार गऱ्यो। अमावास्याको बिहान त्यो तालजङ्घ भोकले पीडित भएर कालगतिले शिव ! शिव ! भन्दै मऱ्यो ॥२३-२७॥

---

८. समुद्भवम्, इति न.सं.पु.पाठः।
९. विमुक्तः, इति न.सं.पु.पाठः।
१०. एतद्द्रश्च तस्याधो व्यलोडत स तस्करः, इति न.सं.पु.पाठः।
११. हठाद्धि, इति न.सं.पु.पाठः।
१२. हर्षपूरितमानसः, इति न.सं.पु.पाठः।
१३. सदुग्धं दुग्धभाण्डञ्च लिङ्गोपर्यपतद् ध्रुवम्, इति न.सं.पु.पाठः।
१४ साक्षान्मुमोद शङ्कर, इति न.सं.पु.पाठः।
१५ चापि भक्तिविवर्जितः, इति न.सं.पु.पाठः।

शिवदूताः समागत्य याने तञ्च निधाय हि[१६]। निन्युः शिवपुरं रम्यं निर्जित्य यमदूतकान् ॥२८॥
सोऽभवच्च गणश्रेष्ठो रुद्रस्यानुचरोऽनिशम्। उपलिङ्गं मृतो यस्मात्तद्दुग्धस्नानपुण्यतः ॥२९॥

नेमुनिरुवाच

भूयो गच्छ विरूपाक्ष यत्र च कुपितेश्वरः। अतश्चैशानदेशे त्वं धनुषां त्रिंशके वने ॥३०॥
एतन्माहात्म्यञ्च शृणोति भक्त्या जन्मान्तरे योऽपि[१७] शिवप्रसादात्।
तन्मानसे[१८] तस्करता भवेन्न भूयात् परद्रव्यनिवृत्तचेताः ॥३१॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां
मुनिकुण्डतीर्थत्रिलिङ्गेश्वरयोर्माहात्म्यं नाम षट्त्रिंशदुत्तरशततमोऽध्यायः ॥१३६॥

---

शिवजीका दूतहरूले त्यहाँ आएर त्यस मृतात्मालाई विमानमा राखे, आएका यमदूतहरूलाई हटाए र उसलाई सुन्दर शिवपुरीमा लगे। त्यस दूधद्वारा शिवजीलाई स्नान गराएको हुँदा प्राप्त भएको पुण्यको प्रभाव र शिवजीको नजिकै मरेको हुँदा त्यो तालजङ्घ शिवजीको सेवक तथा गणश्रेष्ठ बन्न पुग्यो ॥२८-२९॥

नेमुनिले भन्नुभयो – हे विरूपाक्ष ! यहाँबाट ईशानपट्टि तीस धनु जति टाढा वनमा कुपितेश्वर महादेव बस्नुभएको छ, त्यहाँ तिमी जाऊ। यो माहात्म्य जसले भक्तिपूर्वक सुन्छ, त्यो व्यक्ति अर्को जन्ममा शिवजीको अनुग्रहबाट परद्रव्यको चाहना गर्ने र चोर वृत्ति अँगाल्ने खालको हुनेछैन ॥३०-३१॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा
मुनिकुण्डेश्वर तीर्थ तथा त्रिलिङ्गेश्वरको माहात्म्यनामक एकसय छत्तिसौं अध्याय पूरा भयो।

---

१६. तं याने च न्याधापयन्, इति न.सं.पु.पाठः। १७. सोऽपि, इति न.सं.पु.पाठः।
१८. धीमान्कदा, इति न.सं.पु.पाठः।

# सप्तत्रिंशदुत्तरशततमोऽध्यायः

## उदकुण्डतीर्थ–कुपितेश्वरशिवलिङ्गयोर्माहात्म्यम्

स्कन्द उवाच

भूयस्तत्राऽगमत् सिद्धस्तेन[1] नेमुनिना समम्। यत्र विराजते सार्द्धं[2] रुद्राण्या कुपितेश्वरः ॥१॥
उदकुण्डे मुदा स्नात्वा सिद्धेन[3] मुनिना सह। चैत्रकृष्णद्वितीयायां तल्लिङ्गञ्च समर्चितम् ॥२॥
तन्निशायां द्विजो लिङ्गं भक्त्या पुपूज[4] पुष्पकैः। धत्तूरैर्बिल्वपत्रैश्च तथा पञ्चोपचारकैः ॥३॥
अभ्यर्च्य शङ्करं सिद्धस्तन्माहात्म्यं मुनीश्वरम्। भक्त्या पप्रच्छ नम्रांसः तन्निशायाञ्च तत्त्ववित् ॥४॥
समाकर्ण्य मुनिर्वाक्यं भक्त्योदितं द्विजन्मनः। व्याजहार ततो वाक्यं सिद्धभक्ताय सम्मुदा[5] ॥५॥

ऋषिरुवाच

शृणु विप्र ! प्रवक्ष्यामि लिङ्गोत्पत्तिं[6] यथा पुरा। एतल्लिङ्गे नरः कश्चिद्विमुक्तो ह्यभवत्पुनः ॥६॥
ऋषिणा द्वितयेनाऽत्र पुरा तप्तं महत्तपः। एतल्लिङ्गं तदोद्भूतं कात्यायन्या समं द्विज ॥७॥
तया लब्धवरो धीमान्सहस्राब्दं तपस्यया[7]। साङ्ख्ययोगेन चाऽत्रैव त्यक्तकलेवरोऽभवत् ॥८॥
कश्चिन्मुक्तः किरातोऽत्र चैतल्लिङ्गप्रसादतः। पूर्वजन्मविपाकेन शठोऽभवदसौ भृशम् ॥९॥
बालिशश्च सदा त्वन्यान् शठवृत्तिमशिक्षत। तद्दोषेणाऽभवत्सोऽपि शठो हि लोकवञ्चकः ॥१०॥
सदा स वञ्चयामास[8] साधुरूपेण सर्वशः। म्लेच्छान् विप्रान् धनाढ्यांश्च नरान्नारीस्तथार्भकान्[9] ॥११॥

---

## अध्याय – १३७

### उदकुण्डतीर्थ र कुपितेश्वर शिवलिङ्गको माहात्म्य

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य ! फेरि ती विरूपाक्ष नेमुनिलाई साथमा लिएर जहाँ कुपितेश्वर महादेव बस्नुभएको थियो, त्यसै ठाउँमा गए। मुनिका साथमा गएका यी सिद्ध विरूपाक्षले चैत्रकृष्ण द्वितीयाका दिन उदककुण्डमा स्नान गरेर त्यस लिङ्गको पूजा गरे। त्यस दिन राति विरूपाक्षले धतूरो, बेलका पात, फूल र पञ्चोपचार विधिबाट लिङ्गको भक्तिपूर्वक पूजा गरे। तत्त्वज्ञाता ती सिद्ध तत्त्वज्ञ विरूपाक्षले राति नम्र भई झुकेर भक्तिपूर्वक शिवलिङ्गको पूजा गरी त्यसको माहात्म्य नेमुनिसित सोधे। ती ब्राह्मणले भक्तिपूर्वक भनेको बोली सुनेर सिद्धर्षि नेमुनिले उत्तर दिनुभयो ॥१–५॥

नेमुनिले भन्नुभयो – हे विरूपाक्ष ! यो लिङ्ग पहिले कसरी उत्पन्न भएको थियो भन्ने कुरा र यस लिङ्गको आराधनाबाट कुन कुन मानिस मुक्त भएका थिए भन्ने वृत्तान्त पनि सुन। हे विरूपाक्ष ! अघि द्वितयनामक ऋषिले यस ठाउँमा तपस्या गरेका थिए। त्यसै बेला कात्यायनीले सहित भएको यस लिङ्गको प्रादुर्भाव भएको हो। हजार वर्ष गरेको तपस्याबाट वर पाएर बुद्धिमान् भएका ती ऋषिले साङ्ख्ययोग अनुसार यहाँ नै शरीर छोडेका थिए ॥६–८॥

पूर्वजन्मको संस्कारले अत्यन्त मूर्ख भएको कुनै किरात यसै लिङ्गको अनुग्रहले गर्दा मुक्त भएको थियो। अरूलाई पनि मूर्ख बनाउन त्यसले शठवृत्तिको (ठग्ने वृत्ति) शिक्षा दियो। त्यसैले त्यो किरात पनि ठग र मूर्ख बन्यो। सज्जनको रूप लिएर त्यसले सधैँ धनाढ्य, म्लेच्छ, ब्राह्मण, स्त्री, पुरुष र बालकहरूलाई पनि ठग्यो ॥९–११॥

---

१. भूयोऽगमत्ततोऽगस्त्य ! सिद्धोऽसौ, इति न.सं.पु.पाठः।
२. लिङ्गम्, इति न.सं.पु.पाठः।
३. सिद्धोऽसौ, इति न.सं.पु.पाठः।
४. अर्चति स्म, इति न.सं.पु.पाठः।
५. सिद्धाय भक्तिने तदा, इति न.सं.पु.पाठः।
६. लिङ्गोद्भूतम्, इति न.सं.पु.पाठः।
७. तपः कृतात्, इति न.सं.पु.पाठः।
८. सततं वञ्चितं तेन, इति न.सं.पु.पाठः।
९. स्त्रीपुंसानर्भकांस्था, इति न.सं.पु.पाठः।

द्विगुणं त्रिगुणञ्चाऽस्य दास्यामि ते चतुर्गुणम्। इदं द्रव्यं भवान् मह्यं ददातु साम्प्रतं विभो ॥१२॥
एतद्द्रव्यस्य मौल्यञ्च यदि दास्याम्यहं न ते। शपेऽहं मम वंशेन किल्विषमनुभूयताम्[१०] ॥१३॥
कृत्वेत्थं शपथं लोकान् वञ्चति स्म स वञ्चकः। शापायुधानृषिश्रेष्ठानपि म्लेच्छान् किमु द्विजः ॥१४॥
एवं लोकाञ्छठो नित्यं वञ्चयित्वा च सर्वशः। वने स्थित्वा च ह्येकाकी[११] कञ्चित्कालं निनाय च ॥१५॥
तपःकृष्णचतुर्दश्यामन्नाभावादुपोषितः। अमावास्यां क्षुधार्तोऽसौ वञ्चयितुं विनिःसृतः[१२] ॥१६॥
तद्दिवसे शठो म्लेच्छं भृङ्गनामानमाशु च। वञ्चयामास क्षुत्क्षामो नीवारभारधारिणम्[१३] ॥१७॥
नीवारान्द्रुतमानीय न्यवेदयत्स[१४] शूलिने। स्वयञ्च बुभुजे शेषमुदकुण्डे जलं पपौ ॥१८॥
भुक्ते तद्बिल्ववृक्षं स सुस्वापारुह्य वै सुखम्। जन्तोर्भयान्महारण्ये नित्यमेव विरूपदृक् ॥१९॥
हस्ताघातेन भारेण बिल्वपत्राणि तस्य च। लिङ्गोपरि बहून्यार्य ! न्यपतंश्च समन्ततः ॥२०॥
स भृङ्गो ज्ञातवान्तेन स्वात्मानं वञ्चितं तदा। अमर्षैः पूरितो म्लेच्छो धन्वी गृहात्प्रनिःसृतः ॥२१॥
हन्तुमना हि तं क्रोधादन्वेषयन् वने त्विह। वनप्रान्तं परिभ्रम्य भृङ्गोऽत्र प्राप्तवान् शठम्[१५] ॥२२॥
ददर्श चाऽत्र तं म्लेच्छः प्रसुप्तं बिल्ववृक्षके। स एव निश्चयं कृत्वा लिङ्गान्तिकं समाव्रजत् ॥२३॥
एतल्लिङ्गे तदा भृङ्गः कृत्वावज्ञां शरेण वै। शठं जघान सुप्तं तमुद्धृत्याकर्णमाशुगम् ॥२४॥
तद्बाणपीडितो वृक्षाल्लिङ्गान्तिकं वने द्रुतम्। भयेन धर्षितस्तस्य पपात सोऽपि तच्छितौ[१६] ॥२५॥
भृङ्गो रुषा शठं शीघ्रं लिङ्गान्तिके च निर्दयम्। मुद्गरैस्ताडयामास पादाघातैश्च मुष्टिभिः ॥२६॥

---

हे प्रभु ! म तपाईंलाई दोब्बर, तेब्बर, चौबर दिन्छु, यो द्रव्य अहिले मलाई दिनुहोस्। यस द्रव्यको मूल्य यदि तपाईंलाई मैले दिइनँ भने तपाईंको वंशले मलाई सराप दिनेछ भन्ने कुरा बुझ्नुहोस् ॥१२-१३॥

हे विरूपाक्ष ! यस्तो किरिया खाएर त्यस ठगले दुनियाँलाई ठग्यो। सराप नै हतियार भएका ऋषिहरू र म्लेच्छलाई पनि ठग्यो। यसरी दुनियाँलाई चारैतिरबाट ठग्ने त्यस मूर्खले एक्लै वनमा बसेर केही समय बितायो। माघकृष्ण चतुर्दशीका दिन खान नपाएर त्यो चोर उपवास बस्यो। अमावास्याको दिन भोकले आत्तिएर त्यो ठग्न हिँड्यो। त्यसदिन त्यो भोकले चूर भयो। सामानामको धान बोकेर ल्याइरहेको भृङ्ग नाम नाम गरेको कुनै म्लेच्छलाई उसले ठग्यो। त्यसले सामाधान ल्याएर शिवजीलाई चढायो, बाँकी सबै आफूले खायो र उदकुण्ड (कुवा) को पानी खायो ॥१४-१८॥

हे विरूपाक्ष ! नीवारान्न अर्थात् सामाधानको भात खाएपछि त्यो मूर्ख अत्यन्त डरलाग्दो जङ्गल भएको हुनाले जन्तुहरूको डरले बेलको रुखमा चढेर सधैं आनन्दसित सुत्दथ्यो। त्यस दिन पनि सुत्न जाँदा त्यसको हातको आघातले धेरै बेलपत्रहरू शिवलिङ्गमाथि खसे। केही समयपछि भृङ्गले आफूलाई म्लेच्छले ठग्यो भन्ने कुरा बुझ्यो। रीसले चूर भई ते भृङ्ग त्यस म्लेच्छलाई मार्नका लागि ऊ बाणसहितको धनु हातमा लिई घरबाट निस्कियो। त्यसलाई मार्नका लागि भृङ्गले उसलाई खाज्दै सारा वन चाहाऱ्यो र सम्पूर्ण वन घुमेर त्यो भृङ्ग यसै ठाउँमा आइपुग्यो ॥१९-२२॥

उसले बेलको रुखमा सुतेको म्लेच्छलाई देख्यो। त्यो त्यही ठग हो भन्ने निश्चय गरेर ऊ लिङ्गको नजिकै गयो। भृङ्गले त्यहाँ शिवलिङ्ग छ भन्ने कुराको ख्याल नगरी कानसम्म बाण तानेर बेलको रूखमा सुतेको त्यस मूर्ख म्लेच्छलाई हिर्कायो। हे विरूपाक्ष ! भृङ्गका बाण लगेर बनेका घाउले पीडित भई त्यो म्लेच्छ वरूबाट लिङ्ग नजिकैको भूमिमा पछारियो। भृङ्गले पनि अत्यन्त रिसाएर लिङ्गको नजिकै रहेको त्यस मूर्ख म्लेच्छलाई तुरुन्तै मुङ्ग्रो, लात्ती र मुठ्ठीले बेसरी हिर्कायो ॥२३-२६॥

---

१०. शपेऽहं तव वंशस्य किल्विषेणानुभूयताम्, इति न.सं.पु.पाठः। ११. वनेऽवसदिदैहाकी, इति न.सं.पु.पाठः।
१२. निःसृतोऽतः प्रवञ्चितुम्, इति न.सं.पु.पाठः। १३. वञ्चति स्म क्षुधार्तोऽसौ नीवारानानयन्मुहुः, इति न.सं.पु.पाठः।
१४. निवेदति स्म, इति न.सं.पु.पाठः। १५. द्विज, इति न.सं.पु.पाठः।
१६. विरूपाक्षोऽपतत्क्षितौ, इति न.सं.पु.पाठः।

शिवशिवेति च प्रोच्य हस्ताभ्यां लिङ्गमस्पृशत्। रक्ष रक्षेश मामद्य चेत्युक्त्वाऽसूञ्जहौ शठः ॥२७॥
म्लेच्छस्य तादृशीञ्चेष्टां प्रेक्ष्य रुद्रः प्रकोपितः। कोपेन भीमरूपोऽयं लिङ्गाद्विनिःसृतो द्रुतम् ॥२८॥
भस्मावशेषितो म्लेच्छः तृतीयेक्षणवह्निना। रुद्रेण रौद्ररूपेण कोपभीषणचेतसा[१७] ॥२९॥
तट्टङ्कारं समाकर्ण्य त्रयो देवा इहागताः। प्रेक्ष्य प्रकम्पिता रुद्रं भक्त्या च तुष्टुवुर्मुहुः ॥३०॥
ॐ नमो भीमाय रुद्राय कुपितेश्वर ते नमः। क्रोधं संहर देवेश रक्षास्मान् शरणागतान् ॥३१॥
भक्ता वै तुष्टुवुर्देवाश्चैतल्लिङ्गे महेश्वरम्। नाम चक्रुश्च[१८] लिङ्गस्य कुपितेश्वर आत्मभूः ॥३२॥
ततःप्रभृति लिङ्गञ्च कुपितेश्वरमुच्यते[१९]। ऋषिभिः सेवितौ तत्र कात्यायनीमहेश्वरौ[२०] ॥३३॥
रुद्रगणास्तमास्थाय याने निन्युः शिवालयम्। वाद्यैर्गीतैर्मुदा नृत्यैर्मोदयन्तः[२१] शठं बहु ॥३४॥
ह्यभूच्छठोऽपि चाद्यापि रुद्रस्यानुचरोऽनिशम्। पापिष्ठो भक्तिहीनोऽपि भक्तियुक्ताः किमु द्विजाः ॥३५॥
नीवारबिल्वपत्राणामत्रैव[२२] निधनस्य च। बहुपुण्यप्रभावात्स मुक्तो लिङ्गप्रसादतः ॥३६॥

---

शिव ! शिव ! भनेर हातले शिवलिङ्गको स्पर्श गर्दै 'हे ईश्वर ! मलाई आज रक्षा गर्नुहोस्, रक्षा गर्नुहोस्' भनेर त्यस शठले प्राण त्याग्यो। म्लेच्छको त्यस्तो क्रियाकलाप देखेर भगवान् शङ्कर अत्यन्त क्रुद्ध हुनुभयो। रीसले गर्दा डरलाग्दो रूप लिएर भगवान् रुद्र तत्कालै लिङ्गबाट प्रकट हुनुभयो। रौद्ररूप लिएर प्रादुर्भाव हुनुभएका भगवान् शङ्करले रिसाएर तेस्रो आँखाबाट निस्किएको डरलाग्दो अग्निद्वारा म्लेच्छलाई खरानी तुल्याउनुभयो। शिवजीको भीषण आवाज सुनेर ब्रह्मा, विष्णु र इन्द्र तीनै देवता त्यस ठाउँमा आइपुगे। रिसाएका रुद्रलाई देखेर थर्थरी काँपे अनि भक्तिले भगवान्‌को स्तुति गरे ॥२७-३०॥

हे भगवान् कुपितेश्वर ! डरलाग्दो स्वरूप भएका हजुरलाई नमस्कार छ। हे देवाधिदेव ! आफ्नो यो रीसलाई तुरुन्त शान्त गराउनुहोस्, शरणमा आएका हाम्रो रक्षा गर्नुहोस्। भक्त देवताहरूले यस लिङ्गमा रहेका भगवान्‌लाई प्रसन्न तुल्याए। ब्रह्माजीले यस लिङ्गको नाम कुपितेश्वर राख्नुभयो। त्यसै समयदेखि यस लिङ्गको नाम कुपितेश्वर रह्यो। ऋषिहरूले कात्यायनी र कुपितेश्वर महादेवको सधैँ सेवा गरे। शिवजीका गणहरू आएर उनीहरूले त्यस शठलाई यानमा राखी बाजा बजाउँदै, गीत गाउँदै, नाँच नाँच्दै मन बहलाएर स्वर्ग लगे ॥३१-३४॥

हे विरूपाक्ष ! त्यो पापी र भक्तिरहित शठ पनि भगवान् शङ्करको सेवक भएर आजसम्म बसेको छ भने भक्ति भएका मानिसहरूको त के कुरा ? हे विरूपाक्ष ! सामाधान, बेलपत्र, यस ठाउँको मृत्यु, उनीहरूको पुण्यको प्रभाव र शिवलिङ्गको अनुग्रहले त्यो शठ मुक्त भयो ॥३५-३६॥

---

१७. कुपिते भीषणाग्निना, इति न.सं.पु.पाठः।
१८. चकार, इति न.सं.पु.पाठः।
१९. ततः प्रभृतिर्लिङ्गोऽयं कुपितेश्वर आश्रुतः, इति न.सं.पु.पाठः।
२०. नित्यं कात्यायनीं महेश्वरम्, इति न.सं.पु.पाठः।
२१. प्रमोदयन्, इति न.सं.पु.पाठः।
२२. नीवारबिल्वपत्रस्य चात्रैव, इति न.सं.पु.पाठः।

भूयो गच्छ विरूपाक्ष ! यत्र सर्वेश्वरो विभुः । चत्वारिंशद्धनुदूरे चोत्तरस्यामतो दिशि[२३] ॥३७॥
शिवगङ्गा शिवाकारा गौरीकुण्डे विराजते । लोकानां वरदा नित्यं स्नातकानां विरूपदृक् ॥३८॥
सर्वेश्वरसमं लिङ्गं नास्ति नास्ति महीतले । सेवितं सर्वलोकैश्च सर्वभावेन सर्वदा ॥३९॥
अध्यायमेतद्धि शृणोति भक्त्या भूम्नो माहात्म्यं कुपितेश्वरस्य ।
न सोऽभिभूयेत शठैश्च पापैः प्राप्नोति शैवं हि पदं ततश्च ॥४०॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये
विरूपाक्षतीर्थयात्रायामुदकुण्डतीर्थकुपितेश्वरयोर्माहात्म्यं नाम सप्तत्रिंशदुत्तरशततमोऽध्यायः ॥१३७॥

---

हे विरूपाक्ष ! जहाँ सर्वेश्वर भगवान् बस्नुभएको छ यहाँबाट चालीस धनु उत्तरमा रहेको त्यस ठाउँमा तिमी जाऊ । शिवको आकार भएकी शिवगङ्गा पनि गौरीकुण्डमा बसेकी छन् । त्यहाँ गएर स्नान गर्ने भक्तलाई उनी सधैँ वर दिन्छिन् । सर्वेश्वरजस्तो लिङ्ग यस पृथ्वीतलमा छैन । सबै प्राणीले सबै भावले यस लिङ्गको सधैँ पूजा गर्छन् ॥३७–३९॥

हे विरूपाक्ष ! जसले भक्तिपूर्वक यो अध्याय सुन्छ र सर्वव्यापक कुपितेश्वर महादेवको पवित्र एवं महत्त्वपूर्ण यो माहात्म्य सुन्छ त्यसलाई कुनै शठले ठग्न सक्दैन र त्यसले शैवपद पनि प्राप्त गर्छ ॥४०॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा उदकुण्डतीर्थ तथा कुपितेश्वरको माहात्म्यनामक एकसय सैंतिसौं अध्याय पूरा भयो ।

---

२३. चोत्तरे दिश्यतोऽधुना, इति न.सं.पु.पाठः ।

# अष्टात्रिंशदुत्तरशततमोऽध्यायः

## गौरीकुण्डसर्वेश्वरशिवलिङ्गयोर्महिमा

स्कन्द उवाच

भूयोऽगमद्विरूपाक्षस्तेनर्षिणा समं मुने। सर्वेश्वरो हि यत्रास्ते सर्वलोकैः समन्ततः ॥१॥
यत्रैव स्थापितं लिङ्गं कुभेश्वरस्त्वयेति वै। चैत्रकृष्णचतुर्थ्यां स स्नात्वा नागह्रदे पुनः ॥२॥
गौरीकुण्डे मुदा स्नात्वा शिवगङ्गे वदन्निति। कुशहस्तो हि सङ्कल्प्य स्नानं कुर्वे च मे तनोः ॥३॥
अस्मिन्तीर्थे विशुद्ध्यर्थं सर्वलोकोपलब्धये। ततः सर्वेश्वरं लिङ्गमुपचारैरपूपुजत्[1] ॥४॥
तव नाम्नेदमाहूतं पुण्यै पञ्चोपचारकैः। सम्पूज्य विधिवल्लिङ्गं तन्निशायां विनिद्रकः ॥५॥
अपृच्छन्नेमुनिं भक्त्या सर्वेश्वरप्रशंसनम्।

विरूपाक्ष उवाच

नमस्ते मुनिशार्दूल भक्ताय ज्ञानदीपक ॥६॥
एतल्लिङ्गस्य माहात्म्यं श्रोतुमिच्छाम्यहं द्विज। गौरीकुण्डस्य माहात्म्यं ह्रदस्य च विशेषतः ॥७॥
को मुक्तोऽत्र पुरा मर्त्यो वद मे मुनिसत्तम।

नेमुनिरुवाच

ब्रह्मणा च कृतं पूर्वमेतत्कुण्डमगाधकम् ॥८॥
कश्यपोऽपि तपस्तेपे लोकानाञ्च सिसृक्षया। गौर्य्या चाराधितं लिङ्गमेतत्कुण्डे ह्यगाधके ॥९॥
समुद्भूतं ततः कुण्डादेतल्लिङ्गं तदा द्विज।

---

## अध्याय - १३८

### गौरीकुण्ड र सर्वेश्वर शिवलिङ्गको महिमा

कुमार स्वामीले भन्नुभयो - हे अगस्त्य मुनि ! त्यसपछि विरूपाक्ष नेमुनिलाई साथमा लिएर दुनियाले वरिपरिबाट घेरिएर बसेका सर्वेश्वर भगवान् जहाँ हुनुहुन्थ्यो त्यसै ठाउँमा गए। त्यसपछि उनी चैत्रकृष्ण चतुर्थीका दिन नागदहमा स्नान गरेर तिमीले कुम्भेश्वर नामले स्थापना गरेको शिवलिङ्ग भएको ठाउँमा गए। त्यसपछि प्रसन्न चित्त भएर उनले गौरीकुण्डमा स्नान गरे, हातमा कुश-जल लिएर हे शिवगङ्गे ! म सम्पूर्ण लोकको प्राप्ति र पवित्रताका लागि यस तीर्थमा स्नान गर्छु भनेर सङ्कल्प गरे। पूजासामग्रीहरू लिएर तिम्रो नामबाट सम्बोधित सर्वेश्वर शिवलिङ्गको पूजा गरे। उनले त्यस दिन राति जाग्राम बसेर पञ्चोपचार विधिले फूलहरू लिएर ॐ सर्वेश्वराय नमः भनी विधिवत् शिवलिङ्गको पूजा गरे। उनले भक्तिपूर्वक सर्वेश्वर शिवलिङ्गको माहात्म्य नेमुनिसित सोधे ॥१-५½॥

विरूपाक्षले भने - भक्तलाई ज्ञान दिने हे मुनिश्रेष्ठ ! हजुरलाई नमस्कार छ। हजुरबाट म यो लिङ्गको विशेष गरी गौरीकुण्डको माहात्म्य सुन्न चाहन्छु। अघि कुन मानिस यहाँ कसरी मुक्त भयो ? हे मुनिश्रेष्ठ ! मलाई बताउनुहोस् ॥६-७½॥

नेमुनिले भन्नुभयो - यो गहिरो कुण्ड ब्रह्माजीले बनाउनुभएको हो। संसारको सृष्टि गर्न चाहने कश्यपले यसै ठाउँमा तपस्या गरेका थिए। हे विरूपाक्ष ! यो गहिरो दहमा अघि पार्वतीले शिवजीको आराधना गर्नुभएको थियो। त्यसैले कुण्डबाट त्यतिखेर यो लिङ्ग पैदा भएको हो ॥८-९½॥

---

१. लिङ्गमपूपुजत्प्रपूजनैः, इति न.सं.पु.पाठः।

आसीत्पूर्वं विरूपा च किराताधिपतेः सुता ॥१०॥
पितृभ्यां सा परित्यक्ता सुनिन्द्यरूपकारणात्[२]। विवाहितामपि स्वामी त्यक्त्वा विरक्तिमानभूत् ॥११॥
युवतौ षोडशाब्दायामपि विरूपतो मुने। लज्जया व्यथिता सापि प्राविशल्ललिता वनम् ॥१२॥
खादन्तु जन्तवो मेऽङ्गमिदङ्क्त्वेति निर्भरम्। मध्ये लिङ्गयुतं कुण्डं भव्यं कुरूपहेलिता[३] ॥१३॥
प्रददर्श महागाढं शिवगङ्गाम्बुनिर्मलम्। कार्तिक्यां पूर्णिमायां स निराहारा सती सदा ॥१४॥
मध्याह्ने त्वरितं विप्र देहं त्यक्तुमियेष च। प्रवन्द्य शिरसा लिङ्गं बध्वाञ्जलिर्विरक्तधी ॥१५॥
त्यक्तुमना ह्यसून्सद्य उत्पपात ह्रदे स्वयम्। तत्क्षोभिताम्बुवीचिस्तां प्रचिक्षेप तटे द्रुतम् ॥१६॥
अग्रहीच्च ततो म्लेच्छो जलादुद्धृत्य सान्त्वयन्। साभवत्तद्ध्रदे स्नानाद्दिव्यनारी सुसुन्दरी ॥१७॥
मुमुदे प्रेक्ष्य स्वात्मानं जलबिम्बे च सुन्दरी[४]। नारदाच्च समाकर्ण्य शक्र इहाययौ द्रुतम् ॥१८॥
सम्प्रेक्ष्य तां मुमोहाशु रूपशीलमहाद्भुताम्। इन्द्रो जग्राह तां शीघ्रं तन्मनोहारिणीं भृशम् ॥१९॥
तार्क्ष्योऽमृतं यथा पूर्वं समक्षे च किरातिनाम्। साऽभवत्सुचिरं कालं शक्रार्द्धासनहारिणी ॥२०॥
अपराञ्चाऽप्सरां विद्धि इन्द्रस्य दयितां प्रियाम्। भूयः शृणु विरूपाक्ष मुक्तः कश्चिन्नराधमः ॥२१॥
एतल्लिङ्गस्य माहात्म्यमभूत्पूर्वं महाद्भुतम्। आसीत्पूर्वं महापापी मध्यदेशे गृहाश्रमी ॥२२॥
चौरेणादाय नित्यं स भुनक्ति स्म द्विजाधमः। प्राग्जन्मनि स चाण्डालो गङ्गातीरे मृतः पुरा ॥२३॥
तस्मादभूच्च विप्रोऽसौ जातिमात्रगरिष्ठवान्।

---

हे विरूपाक्ष ! अघि कुनै किरात राजाकी कुरूपा एउटी छोरी थिइन्। नराम्रो रूप भएकी हुँदा बाबु–आमाले तिनलाई त्यागी दिएका थिए। विवाह गरे तापनि नराम्रो रूप भएको हुँदा सोह्र वर्षकी ती युवतीलाई उसको लोग्नेले छोडिदियो र विरक्त भयो। लाजले गर्दा अत्यन्त चिन्तित भएर मेरो शरीरलाई जनावरले खाऊन् भनेर उनी ललिता नाम गरेको वनमा प्रवेश गरिन्। ती विरूपाले यसै कुण्डको माझमा शिवलिङ्ग रहेको अत्यन्त गहिरो निर्मल शिवगङ्गाको जल देखिन्। कार्तिक पूर्णिमाको दिन निराहार बसेकी ती विरूपाले मध्याह्नको समयमा छिट्टै प्राण छोड्ने विचार गरिन् ॥१०–१४॥

शिवजीलिङ्गलाई हात जोडेर नमस्कार गर्दै विरक्त बनेकी ती विरूपा प्राणत्याग गर्नका लागि दहमा आफैँ हाम फालिन्। उनी पानीमा हामफाल्दा क्षुब्ध भएका पानीका तरङ्गहरूले तुरुन्तै तिनलाई किनारा लगाए। एउटा म्लेच्छले तिनलाई पानीबाट बाहिर निकाल्यो र सान्त्वना दियो। ती विरूपा कन्या त्यस तलाउमा स्नान गरेपछि दिव्य सुन्दरी भइन्। पानीमा आफ्नो छाया देखेर उनी अत्यन्त प्रसन्न भइन् ॥१५–१७॥

नारदको मुखबाट त्यो सबै वृत्तान्त सुनेपछि उत्सुक बनेका इन्द्र त्यहाँ आए। तिनको अत्यन्त अद्भुत रूपराशिलाई देखेर उनी मुग्ध भए। वर्षा समयको प्रारम्भमा अघि गरुडले जसरी सर्पलाई झम्टिएका थिए त्यसरी नै किरातहरूका सामसमा नै ती सुन्दरी नारीलाई इन्द्रले च्याप्पै समाते। ती किरातपुत्री धेरै समयसम्म इन्द्रको अर्धासनकी अधिकारी बनिन्। अर्की इन्द्रकी प्रिय अप्सरा पनि त्यहाँ थिइन् भन्ने कुरा जान ॥१८–२०½॥

हे विरूपाक्ष ! कुनै दुष्ट मानिस फेरि त्यस ठाउँमा आयो,यस लिङ्गको माहात्म्य अत्यन्त अद्भुत छ, सुन। प्राचीनकालमा मध्यप्रदेशमा गृहस्थाश्रममा रहेको कुनै एउटा महापापी थियो। ब्राह्मणहरूमा अधम त्यो पापी चोरी गरेर सधैँ खाने गर्थ्यो। त्यो चाण्डाल पूर्वजन्ममा गङ्गाको किनारामा मरेको थियो। त्यसैले गर्दा त्यो यस जन्ममा ब्राह्मणकुलको जातिले मात्र उच्च भएर जन्म्यो ॥२०–२३½॥

---

२. निन्दायुक्तेन रूपेण सा त्यक्ता पितृभ्यां ह्यभूत्, इति न.सं.पु.पाठः।
३. एतत्कुण्डं विरूपा सा मध्येलिङ्गस्थितं वरम्, इति न.सं.पु.पाठः।
४. जलबिम्बे समालोक्य स्वात्मानञ्च मुमोद हि, इति न.सं.पु.पाठः।

क्वचिद्दिने च विप्रोऽसौ कलहेन भृशं स्वकाम् ॥२४॥
भार्याञ्जघान पादेन ह्यजस्रं मुष्टिना पुनः । ब्राह्मण्यसून् जहौ सद्यस्ताडनासह्यपीडया ॥२५॥
त्यक्त्वा भार्यां मृतां विप्रो गृहान्निःसृतवान्पुनः । देशानद्रीन्समालङ्घ्य गङ्गादास इहाऽगमत् ॥२६॥
पथिकानां मुखाच्छ्रुत्वा पशुपतेः प्रशंसनम् । एतद्वने तदाऽवात्सीद् गङ्गादासो द्विजाधमः ॥२७॥
मुन्यन्नेनोपजीवी च रहःस्थाने सुनिर्जनः । परद्रव्यं समाकृष्य बलाच्चौर्येण वा पुनः ॥२८॥
भुनक्ति स्म रहःस्थाने चैकाकी स निरन्तरम्[४क] । गङ्गादासस्तदा मृत्युकालं सम्प्राप्तवान् किल[५] ॥२९॥
मुनिवाक्यं शृणोति स्म ज्ञानयुक्तोऽभवद् द्विज । कालो ह्यद्यैव ते क्षुद्र लिङ्गस्याऽस्य पुरो भव[६] ॥३०॥
इति मुनिमुखाच्छ्रुत्वा लिङ्गान्तिकं जगाम सः । मधोः कृष्णचतुर्दश्यां यमदूता इहाययुः ॥३१॥
पाशदण्डकरा भीष्माश्चित्रगुप्तानुशासतः । ददर्श यमदूतान् स करालवदनान् तदा ॥३२॥
पाशहस्तान् समायातान् तर्जयतो लगुडकैः[७] । तान्प्रेक्ष्य त्वरितं पापी चाऽलिलिङ्ग दृढं भयात् ॥३३॥
एतल्लिङ्गं स हस्ताभ्यां कृत्वा[८] मूर्ध्ना प्रधर्षयन् । शिवशिवेति मां रक्ष वदन्भीत्या प्रकम्पितः ॥३४॥
अर्पयामीममात्मानं त्वयि सर्वेश्वर प्रभो । एवं भीत्या स्थिते पापे लिङ्गान्तिकं समाययुः[९] ॥३५॥
पाशमुद्यम्य विप्रेश ! सदण्डा यमकिङ्कराः[१०] । ततस्ते मन्त्रयामासुः किं कर्त्तव्यमयन्त्विति ॥३६॥
लिङ्गान्तिके न सङ्ग्राह्य इति तस्थुः विमृश्य ते ।

---

कुनै दिन त्यस ब्राह्मणले झगडा गऱ्यो र आफ्नी पत्नीलाई लात र मुक्कीले खूबसित हिर्कायो । ब्राह्मणीले पिटाइको असह्य पीडा खप्न नसकी प्राण छोडिन् । अनि त्यो ब्राह्मण मरेकी ब्राह्मणीलाई छोडेर घरबाट निस्कियो र अनेकौं देश तथा नदीहरू पार गर्दै यसै शिवलिङ्ग भएको ठाउँमा आइपुग्यो । त्यहाँ बटुवाहरूको मुखबाट उसले पशुपतिको प्रशंसा सुन्यो । त्यसपछि यसै वनमा आएर त्यो अधम ब्राह्मण गङ्गादास बस्न थाल्यो । उसले एकान्तस्थानमा एक्लै बसेर सामाधानबाट जीविका चलायो । त्यो गङ्गादास सदा जबर्जस्ती चोरी गरेर ल्याएको अर्काको धन एकान्तस्थानमा बसेर खान्थ्यो ॥२४–२८॥

त्यस गङ्गादासको मर्ने समय आइपुग्यो । ज्ञानी भएर उसले मुनिको वचन सुन्यो– 'तेरो काल आज नै छ, हे क्षुद्र ! तुरुन्त यस लिङ्गको नजिकै जा ।' यस्तो मुनिको वाक्य सुनेर त्यो ब्राह्मण शिवलिङ्गको नजिकै गयो । वैशाखकृष्ण चतुर्दशीको दिन अति डरलाग्दा, हातमा पाश र दण्ड लिएका यमराजका दूतहरू चित्रगुप्तको निर्देशन अनुसार उसलाई लिन त्यहाँ आए । त्यसपछि उसले नजिकै आएका डरलाग्दो मुख भएका, हातमा पाशो लिएका र यमदण्ड देखाउँदै गाली गर्न लागेका यमदूतलाई देख्यो ॥२९–३२॥

तिनीहरूलाई देखेर डरले आत्तिँदै हातले यस लिङ्गलाई आलिङ्गन गऱ्यो र त्यही लिङ्गमा आफ्नो शिरलाई बारम्बार ठोक्दै भन्न थाल्यो– 'हे प्रभु ! हे सर्वेश्वर ! म हजुरलाई यो आत्मा समर्पण गर्दछु । शिव ! शिव ! मेरो रक्षा गर्नुहोस् ।' यसो भन्दै ऊ डरले काँप्न थाल्यो । त्यस पापीले शिवजीको लिङ्ग नजिकै गएर शिवलिङ्गलाई अँगालो हालेको देखी अब के गर्ने भनी यमराजका दूतहरू आपसमा विचार–विमर्श गर्न थाले । हे विरूपाक्ष ! यमका दूतहरूले पाश उज्याएर यमदण्ड देखाउँदै त्यसलाई गाली गरे र 'हेर, पर्खेर बस, तेरो कुन हविगत हुन्छ ? भन्दै आएका यमदूतले लिङ्गमा टाँसिएको त्यसलाई देखेर लिङ्गमा टाँसिएको यस पापीलाई समाउन हुँदैन, अब यसलाई के गर्ने भनेर आपसमा सरसल्लाह गरे ।३३–३६½॥

---

४क. सुनिर्जनो हि सन्ततम्, इति न.सं.पु.पाठः ।
५. तत्र च कालं प्राप्तवान्पुनः, इति न.सं.पु.पाठः ।
६. एतल्लिङ्गान्तिकं व्रज, इति न.सं.पु.पाठः ।
७. यमदण्डेन तर्जयन्, इति न.सं.पु.पाठः ।
८. लिङ्गे, इति न.सं.पु.पाठः ।
९. स चागमत्, इति न.सं.पु.पाठः ।
१०. यमदण्डेन तर्जयन्, इति न.सं.पु.पाठः ।

ब्राह्मणस्तै समाहूतो रे रे ब्रह्मन्निहाव्रज ॥३७॥
न स्थातव्यं त्वया तत्र किल्विषाङ्कितदेहिना । यदि नायासि चाऽत्र त्वं दण्डेनाऽनेन ताड्यसे ॥३८॥
को रक्षति च तत्र त्वां मूढ वदाऽधुना ध्रुवम् । इत्युक्त्वाशु तदा तस्मै महाचण्डो रुषाऽन्वितः ॥३९॥
चिक्षेप च महापाशं तमुद्दिश्य प्रनोदयन् । ततः पाशेन तं विप्रं सलिङ्गं स बबन्ध च ॥४०॥
उत्ससार च पाशस्तं सलिङ्गबन्धनं रुषा । ततो न चलितं लिङ्गं प्रेक्ष्य ते युगपत्पुनः ॥४१॥
बबन्धुस्ते रुषा पाशं तल्लिङ्गे दृढबन्धनम्[११] । विच्छिन्नोऽभूत् ततः पाशो[१२] लिङ्गसंघर्षणाद् बलात् ॥४२॥
आश्चर्यं प्राप्तवन्तस्ते प्रवदन्तश्च किं पुनः । ततो रुषा पुनस्ते तं द्रुतं हन्तुं समुद्यताः ॥४३॥
दण्डेन तर्जयन्ति स्म ब्रुवन्तः प्रहरामहे । ततश्च वायुरूपेण तत्कर्णे प्राजपत् प्रभुः ॥४४॥
तदर्जितानि पापानि सद्यश्चापानयत् तदा । मा मां त्रस्यसि वत्स त्वं क्षुद्राद् शमनकिङ्करात्[१३] ॥४५॥
मृत्युं जहीहि विप्राद्य मत्प्रसादाद्विकिल्विषः । ततोऽम्बरात्समागत्य प्रमथास्त्वरितं तदा ॥४६॥
ऊचुरिहैव सामर्षं किङ्करेभ्यो यमस्य च ।

प्रमथा ऊचुः

रे रेऽविवेकिनः पापा अपि दण्डधरास्तथा ॥४७॥
किङ्कराश्चित्रगुप्तस्य बुद्धिर्व ईदृशी यतः । सर्वेश्वरं महालिङ्गमनेन च समाश्रितम् ॥४८॥
युष्माभिर्न कथं दृष्टं रे रे मूढाविवेकिनः । युक्तोऽपि यो महापापैराजन्मकृतकिल्विषैः ॥४९॥
लिङ्गस्पर्शादभूत् सोऽपि निष्पापविग्रहः क्षणात् । चिरञ्जीवित्वमस्मै च दत्तं देवेन शूलिना[१४] ॥५०॥

---

यसरी आपसमा सल्लाह गरेर ती यमदूतहरूले 'अरे रे ब्राह्मण ! पापी शरीर लिएर तैँले त्यहाँ बस्न सुहाउँदैन, यहाँ आइज' भनेर त्यस ब्राह्मणलाई बोलाए। उनीहरूले 'यदि आउँदैनस् भने तैँलाई यसै यमदण्डले प्रहार गर्नेछौँ, हे मूर्ख ! अहिले तैँलाई रक्षा गर्ने को छ, बता' पनि भने ॥३७–३८॥

यति भनेर अत्यन्त क्रुद्ध भएका यमदूतमध्ये महाचण्डले त्यस ब्राह्मणलाई लक्ष्य गरेर हल्लाउँदै तुरुन्त महापाश फ्याँक्यो । त्यसपछि त्यो पाशले लिङ्गसहित ब्राह्मणलाई बाँध्यो । बलियोसँग गढेको त्यो लिङ्ग एकैचोटि उखेल्न खोज्दा पटक्कै चलेन । त्यसपछि उसले लिङ्गबाट जबर्जस्ती तान्दा घोटिएर त्यो पाशो छिन्यो । त्यो देखेर यमराजका दूतहरू के भयो भन्दै आश्चर्यचकित भए । त्यसपछि रीसले तिनीहरू त्यस ब्राह्मणलाई मार्न झम्टिए र लट्ठीले हिर्काउँछौँ भनेर त्यसमाथि प्रहार गरे ॥३९–४३॥

त्यसपछि वायु रूप लिएर भगवान् उसको नजिकै आइपुग्नुभयो र त्यस ब्राह्मणका सम्पूर्ण पापहरूलाई तुरुन्त निवारण गर्दै त्यसको कानमा सुटुक्क भन्नुभयो– 'हे बाबु ! तिमी क्षुद्र यमराजका दूतदेखि नडराऊ। मेरो अनुग्रहबाट पाप मुक्त भयौ, अब मृत्युलाई जित' । त्यसपछि आकाशबाट तुरुन्त प्रमथगणहरू त्यहाँ आए । उनीहरूले रिसाउँदै यमराजका दूतहरूलाई भन्न लागे ॥४४–४६½॥

प्रमथगणहरूले भने – हे अविवेकी चित्रगुप्तका दण्डधारी पापी दूतहरू हो ! के तिमीहरूको बुद्धि यस्तै हो ? हे मूर्ख अविवेकी हो ! सर्वेश्वर महादेवको लिङ्गलाई यसले समातेको थियो, त्यो दृश्यलाई तिमीहरूले किन देखेनौ ? जन्मभरि गरेका पापहरूले परिपूर्ण भए तापनि जसले यस लिङ्गको स्पर्श गर्छ त्यसको शरीर तुरुन्त पापबाट मुक्त हुन्छ ॥४७–४९॥

---

११. रुषोस्त्रष्टुं भृशं पाशं तं लिङ्गं दृढबन्धकम्, इति न.सं.पु.पाठः । १२. ततश्चिच्छेद तत्पाशम्, इति न.सं.पु.पाठः ।
१३. क्षुद्राद्यमकिङ्करात्, इति न.सं.पु.पाठः । १४. अस्मै दत्तं विशेषेण चिरञ्जीवञ्च शूलिना, इति न.सं.पु.पाठः ।

अनेनाऽप्यर्पितो लिङ्गे स्वात्मा वै त्रिविधैः पुनः। बद्ध्वा पाशेन तल्लिङ्गमाकृष्टञ्च यतः पुनः ॥५१॥
अविवेकेन पापिष्ठाः भुङ्ध्वं पापफलं ततः[१५]।

ऋषिरुवाच

इत्युक्त्वा प्रमथा जघ्नुर्यमदूतान्भृशं रुषा ॥५२॥
रुद्रकृतागसस्तुङ्गशूलमुद्गरपट्टिशैः। अमर्षैः पूरितैः शैवैरतिचण्डो भृशं हतः ॥५३॥
खट्वाङ्गेन भृशं पूर्वं रे रे पापाः समूचिरे[१६]। शङ्कुकर्णस्थितैकाङ्घ्रिर्बाणासुरस्त्रयाननः ॥५४॥
यमदूतान् भृशं जघ्नुः खड्गमुद्गरपट्टिशैः। अतिचण्डो महाचण्डः प्रचण्डश्चण्ड एव च ॥५५॥
यमदूता रुषाविष्टा दण्डैर्जघ्नुर्हरानुगान्। अतिचण्डो भृङ्गिनं च[१७] दण्डेन च जघान वै ॥५६॥
प्रचण्डः शङ्कुकर्णञ्च चण्डस्त्रयाननं तथा। महाचण्डो महोग्रास्यं दण्डेनातर्जयद् रुषा ॥५७॥
अभिदुद्राव देवांस्तान् दण्डं तद् भ्रामयन् द्रुतम्। भेजिरे प्रमथाः शीघ्रं तद्भयाच्च चतुर्दिशः ॥५८॥
दण्डपाणिं समालोक्य वने सिंहं मृगा यथा। ततो नन्दी रुषाविष्टो महाचण्डञ्च सत्वरम् ॥५९॥
शूलमुद्यम्य दुद्राव हन्तुकामो महाबली। पुरोधाय द्विजं नन्दी ह्यभिद्रुत्य शनैः शनैः ॥६०॥
ग्रावपाणिश्च पाषाणैर्जघान यमकिङ्करान्। अन्तरिक्षादुवाचेदं श्रावयंस्तानविग्रहः ॥६१॥
हन्तुकामं यमं तावत् प्रव्यक्तं नन्दिनं तदा।

---

यस ब्राह्मणले सर्वेश्वर भगवान्को लिङ्गमा आफ्नो आत्मालाई तीनै किसिमको भक्तिद्वारा समर्पण गर्‍यो। त्यसैले गर्दा भगवान् शङ्करले यसलाई चिरञ्जीवी हुने वर दिनुभएको छ। त्यस लिङ्गलाई पाशले बाँधेर विचारै नगरी तिमीहरूले तान्यौ। त्यसैले गर्दा हे पापिष्ठ हो ! आफूले गरेको फल आफैं भोग ॥५०–५१½॥

नेमुनिले भन्नुभयो – यति भनेर प्रमथगणहरूले भगवान् शिवजीमाथि अपराध गरेको हुँदा लामा त्रिशूल, मुङ्ग्रो र गदाले यमराजका दूतहरूलाई रिसाएर खूबसित पिटे। शिवगणले रिसाएर हे पापी ! भन्दै पहिले खट्वाङ्गले लाग्ने गरी अतिचण्डलाई प्रहार गरे। त्यसपछि शङ्कुकर्ण, एकाङ्घ्रि, बाणासुर र त्रयाननले यमदूतहरूलाई तरवार, मुङ्ग्रो र भालाले खूबसित हिर्काए। अतिचण्ड, महाचण्ड, प्रचण्ड र चण्ड नाम गरेका यमराजका दूतहरूले पनि रिसाएर लठ्ठीले शिवजीका गणहरूलाई पिटे। अतिचण्डले रिसाएर भृङ्गीलाई हिर्कायो। प्रचण्डले शङ्कुकर्णलाई र चण्डले त्रयाननलाई रिसाउँदै हिर्कायो ॥५२–५६॥

डरलाग्दो मुख भएको महाचण्ड रिसाएर लठ्ठी घुमाउँदै देवताहरूप्रति तुरुन्त जाइलाग्यो। हातमा दण्ड लिने यमदूतलाई देखेर प्रमथगणहरू वनमा सिंहलाई देखेर मृग भागेझैं भागे। त्यसपछि महाबली नन्दी रिसाएर महाचण्डलाई मार्नका लागि शूल उठाएर जाइलाग्नुभयो। नन्दीले ब्राह्मणलाई अगाडि लगाएर हातमा ढुङ्गा लिएर यमराजका दूतहरूलाई हिर्काउनुभयो। शरीर नभएको कुनै तत्वले अन्तरिक्षबाट यमराजलाई मार्न तयार भएका नन्दीलाई सुनाउँदै यो कुरा भन्यो ॥५७–६१½॥

---

१५. पापिष्ठैः तस्माद्भुङ्क्ष्वाधुना कृतम्, इति न.सं.पु.पाठः। १६. पाप त्विति ब्रुवन्, इति न.सं.पु.पाठः।
१७. रुषा भृङ्गी, इति न.सं.पु.पाठः।

अशरीर उवाच

न हन्तव्या न हन्तव्या भवता यमकिङ्कराः ॥६२॥

त्रिशिरः शङ्कुकर्णार्य भो भो भृङ्गिन् कदापि न। मया दत्तश्च कालाय तद्गौरवाद्वरः पुरा ॥६३॥

लोकानां संयमायार्य न हन्तव्यास्ततश्च ते। एनं मृत्युञ्जयं विप्रं कैलासं प्रापयाशु च ॥६४॥

मम पार्श्वचरो नित्यं भवेदसौ गणोत्तमः।

ऋषिरुवाच

तद्दूतानां समक्षे च संस्थाप्य[१८] पुष्पके द्विज ॥६५॥

तं निन्युः प्रमथाः शैवं ततो गीतोत्सवैस्तदा। यमदूताः स्वकं जग्मुर्भग्नमनोरथाः पुरम् ॥६६॥

कृत्वात्मानं तदा धिक् च प्रेक्ष्य तेषाञ्च चेष्टितम्। ततो दूताश्च कालाय पाशं दण्डं निवेद्य च ॥६७॥

तद्वार्त्तां कथयामासुः प्रणम्य चाश्रुलोचनाः। ददर्श तान्तदा कालो व्रणाङ्कितान् स्वकिङ्करान् ॥६८॥

हतपराक्रमान् पाशं दण्डं धृत्वा हतौजसः। तद्वृत्तान्तं समाकर्ण्य प्रेक्ष्य पाशञ्च दण्डकम् ॥६९॥

निनिन्द स्वं तदात्मानं कालो विरक्तधीस्तदा। तत उत्पाटितं पट्टं बुद्ध्या सम्मन्त्र्य तत्पुनः ॥७०॥

तत्कृतानि च यावन्ति शमनो द्रष्टुमैक्षत[१९]। यावत्कृतानि पापानि लिखितानि तु पट्टके ॥७१॥

दृष्ट्वा[२०] सर्वाणि लुप्तानि कालश्चित्रमवाप्तवान्[२१]।

ततो ध्यात्वेश्वरं सम्यक् ज्ञानवाँस्तत्कृतानि च ॥७२॥

एतल्लिङ्गप्रसादाच्च स्वदूतेभ्य उवाच ह।

---

शरीर नभएको तत्त्वले भन्यो – हे नन्दी ! हे त्रिशिर ! हे शङ्कुकर्ण ! हे भृङ्गी ! तपाईंहरू यमराजका दूतहरूलाई कहिल्यै पनि नमार्नुहोस्, नमार्नुहोस्। सम्पूर्ण प्राणीहरूलाई अनुशासनमा राख भनेर मैले अघि काललाई वरदान दिएको थिएँ, त्यसैले तिनीहरूलाई मार्नुहुँदैन। मृत्युलाई पनि जित्ने यस ब्राह्मणलाई तुरुन्त कैलास पुऱ्याउनुहोस्। यो मेरो गणको नाइके भएर सधैँ पार्श्ववर्ती हुनेछ ॥६२-६४॥

नेमुनिले भन्नुभयो – ती दूतहरूको अगाडि त्यस ब्राह्मणलाई पुष्पक विमानमा राखेर गीत र उत्सवका साथ प्रमथगणहरूले शिवलोक लगे। यमराजका दूतहरू तिनीहरूको क्रियाकलाप देखेर आफूलाई धिक्कार्दै मन खिन्न बनाएर आफ्नो लोकमा गए। त्यसपछि दूतहरूले आँखाभरि आँसु पार्दै यमराजलाई प्रणाम गरी पाश र दण्ड सुम्पँदै त्यो सबै वृत्तान्त बताए। त्यसपछि कालले पराक्रमहीन भएका पाश र दण्डलाई फ्याँकेका तेजोहीन घाइते आफ्ना दूतहरूलाई देखे। त्यो वृत्तान्त सुनेर पासो र दण्डलाई अघिल्तिर देखी विरक्त भएका कालले आफ्नो आत्माको पनि निन्दा गरे ॥६५-६९॥

हे विरूपाक्ष ! त्यसपछि यमराजले जुन पट्टमा त्यस ब्राह्मणले गरेको कर्म लेखिएको थियो, त्यसलाई ध्यानपूर्वक खोजेर निकाले। त्यस ब्राह्मणले गरेका जति सबै पापपट्टमा उल्लेख भएका थिए, ती सम्पूर्ण पापकर्महरू मेटिएको देखेर यमरा आश्चर्यमा परे। त्यसपछि भगवान् शङ्करको ध्यान गरेर उनले यसै लिङ्गको अनुग्रहले गर्दा उसका सम्पूर्ण पाप नाश भएका रहेछन् भन्ने कुरा थाहा पाए र आफ्ना दूतहरूलाई भन्न लागे ॥७०-७२½॥

---

१८. आस्थाय, इति न.सं.पु.पाठः।
१९. यत्तद्धि यमेन च तदा द्विज, इति न.सं.पु.पाठः।
२०. तानि, इति न.सं.पु.पाठः।
२१. प्रदर्श्य चित्रमाप्तवान्, इति न.सं.पु.पाठः।

काल उवाच

निवारिताश्च यूयं भो वारं वारञ्च सर्वदा ॥७३॥

लिङ्गान्तिके रुद्रधाम्नि न गच्छत कदाचन[२२] । दूताः तत्र कथं याताः भूयो निवारिता अपि[२३] ॥७४॥

युष्माभिरविवेकेन प्राकृतैरिव तत् कृतम्[२४] । रुद्रभक्तो हरेर्भक्त आर्यायाश्च विशेषतः[२५] ॥७५॥

अत्यन्तं पातकी चाऽपि न द्रष्टव्यः कदाचन[२६] । निष्पापोऽसावभवद्विप्रः पट्टमेतत् प्रदृश्यताम् ॥७६॥

दूरीकृतानि पापानि द्विजस्य[२७] शूलिनाऽधुना । अपराधसहस्रं नः क्षम्यतां भगवन्विभो ॥७७॥

ऋषिरुवाच

एवं प्रणम्य रुद्रञ्च कालोऽसौ भावभक्तिभिः[२८] । सान्त्वयामास तान् दूतान् सामदानैश्च गर्हयन् ॥७८॥

तदादि मुनयो देवा न मुञ्चन्ति कदापि च । एतल्लिङ्गं सेवमाना तिष्ठन्त्यत्र निरन्तरम्[२९] ॥७९॥

शंसन्ति[३०] मुनयो देवाः कुम्भेश्वरं तथाऽपरम् । मृत्युञ्जयं महालिङ्गं सर्वेश्वरं तथा पुनः ॥८०॥

गौरीकुण्डे स्त्रियः स्नात्वा भक्त्यार्चयन्ति शैलजाम् । भुक्त्वा हि सकलान्भोगान्देहान्ते तत्पदं गताः ॥८१॥

इदं मृत्युञ्जयं लिङ्गं सर्वेश्वराभिधानकम् । तत्र स्नात्वाऽर्चयन् धीरो लोकान्ते तत्पदं लभेत् ॥८२॥

---

कालले भने – तिमीहरूलाई बारम्बार नजाओ भनेको छु। त्यसैले शिवलोक र शिवलिङ्गको नजिकै तिमीहरू कहिल्यै नजानू। शिवलिङ्गको नजिकै नजाओ भन्दा भन्दै पनि कसरी तिमीहरू त्यहाँ गयौ ? तिमीहरूले विचारै नगरी पशुको जस्तो व्यवहार गर्‍यौ। धेरै पापी भएता पनि यसले गरेको रुद्रभक्ति, हरिभक्ति र देवीको भक्तिलाई हेरेनौ। यो ब्राह्मण अहिले निष्पाप भएको छ, यो पट्टा हेर। यसका सम्पूर्ण पापहरू अहिले भगवान् शङ्करले मेटाइदिनुभएको छ। हे भगवन् ! हे प्रभु ! हाम्रा हजारौँ अपराधलाई क्षमा गरिदिनुहोस् ॥७३-७७॥

नेमुनिले भन्नुभयो – यसरी भगवान् रुद्रलाई प्रणाम गरेर यमराजले साम, दान आदि उपायको प्रयोग गर्ने उनीहरूलाई सान्त्वना दिए। हे विरूपाक्ष ! त्यसै समयदेखि यस लिङ्गलाई देवताहरूले कहिल्यै पनि छोडेका छैनन्। प्रसन्न भएर उनीहरू यस लिङ्गको सेवा गर्दछन्। यस तीर्थलाई ऋषिहरूले मृत्युञ्जयतीर्थ, महालिङ्ग र सर्वेश्वर भनेका छन् ॥७८-८०॥

गौरीकुण्डमा स्त्रीजातिहरूले स्नान गरेर भक्तिपूर्वक पार्वतीको पूजा गरे भने उनीहरू सम्पूर्ण भोग गरेर मरेपछि भगवान्‌को पदमा जान्छन्। त्यस ठाउँमा सर्वेश्वर नाम गरेका मृत्युञ्जय भगवान्‌को पूजा गर्‍यो भने मानिसले उहाँको लोकलाई प्राप्त गर्न सक्नेछ ॥८१-८२॥

---

२२. रुद्रालये कदा चापि लिङ्गान्तिकं न गच्छत, इति न.सं.पु.पाठः।

२३. लिङ्गान्तिकं कथं दूता वारिता अपि वै गताः, इति न.सं.पु.पाठः।

२४. सन्ततम्, इति न.सं.पु.पाठः।

२५. रुद्रभक्तिं हरेर्भक्तिमार्यायाश्च विशेषतः, इति न.सं.पु.पाठः।

२६. बहुपातकिनं चापि न द्रष्टव्यं कदापि च, इति न.सं.पु.पाठः।

२७. तस्यैव, इति न.सं.पु.पाठः।

२८. विविधैः पुनः, इति न.सं.पु.पाठः।

२९. एतल्लिङ्गं मुदा विप्र । तिष्ठन्त्यत्र प्रसेवयन्, इति न.सं.पु.पाठः।

३०. वदन्ति, इति न.सं.पु.पाठः।

अतः पश्चिमदेशे त्वं क्रोशत्रयविदूरतः । गोलोकेश्वरो यत्र रुद्रतीर्थे च गच्छतात् ॥८३॥
एतन्माहात्म्यं कथितं मया ते सर्वेश्वरस्यार्य विरूपनेत्र !
शृण्वन्ति येऽध्यायमिमं पवित्रं मुञ्चन्ति कालस्य च यातनास्ते ॥८४॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां
सर्वेश्वरमाहात्म्यं नामाऽष्टात्रिंशदुत्तरशततमोऽध्यायः ॥१३८॥

---

हे विरूपाक्ष ! अब तिमी यहाँबाट पश्चिमपट्टि तीन कोस पर रहेको रुद्रतीर्थ र गोलोकेश्वरको स्थानमा जाऊ। हे विरूपाक्ष ! मैले तिमीलाई सर्वेश्वर भगवान्‌को माहात्म्य बताएँ। जसले यो अनुपम अध्याय सुन्छ, ती व्यक्तिहरू कालको यातनाबाट मुक्त हुन्छन् ॥८३-८४॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा सर्वेश्वरको माहात्म्यनामक
एकसय अठ्तिसौं अध्याय पूरा भयो।

# ऊनचत्वारिंशदुत्तरशततमोऽध्यायः

## रुद्रतीर्थ-गोलोकेश्वरलिङ्गयोर्महिमा

स्कन्द उवाच

ततोऽगमद्विरूपाक्षो मुनिना सह कुम्भज। गोलोकेशो हि यत्रास्ते तल्लिङ्गञ्च प्रणम्य वै ॥१॥
रुद्रतीर्थे मुदा स्नात्वा गोलोकेश्वरमार्चयत्[1]। सङ्कल्प्य विधिवत्तीर्थे कुशहस्तो विरूपदृक् ॥२॥
चैत्रकृष्णस्य षष्ठ्यां स लिङ्गमभ्यर्च्य तन्निशि[2]। अपृच्छन्नेमुनिं भक्त्या तन्माहात्म्यं विनिद्रकः ॥३॥
ततो बभाण तस्मै स मुनिवरः स्वसेविने[3]। तन्माहात्म्यं घटोद्भूत ! सर्ववार्त्ताविशारदः ॥४॥

ऋषिरुवाच

ब्रह्मणाराधितं पूर्वमेतल्लिङ्गं महीतले। गोलोकात्स इहागत्य तस्थौ लिङ्गात्मको हरः ॥५॥
तद्गोलोकेश्वरं ख्यातमेतल्लिङ्गं सुरर्षिभिः। शृणु मुक्तः पुरा कश्चिद्रक्षो ह्यत्र विरूपदृक् ॥६॥
केकरो नाम रक्षश्च कश्चिदासीत्पुरा द्विज। उज्जयिन्यां महारण्ये चाऽवात्सीत्सर्वदा त्विह ॥७॥
ज्येष्ठे मासि सिते पक्षे चतुर्दश्यां स कौणपः। भुक्त्वा मृगं पिपासार्त्तो जलं पातुमिहागतः ॥८॥
एतत्तीर्थे जलं पीत्वा ज्ञानवान् कौणपो ह्यभूत्। एतल्लिङ्गमपश्यच्च ज्वलद्दीपशिखामिव ॥९॥
एकसंवत्सरञ्चाऽत्र चाऽवात्सीत्कौणपः शुचिः। भक्त्या पुष्पैर्जलैर्नित्यमेतल्लिङ्गं समार्चयत्[4] ॥१०॥
कृष्णाष्टम्याञ्च माघस्य प्राप्तकालो ह्यसूञ्जहौ। व्रती निरशनस्तद्वत्प्रेक्ष्य मुनिव्रतं धिया ॥११॥
याने तं प्रमथाः सम्यक् निन्युरास्थाय शैवकम्। गीतवाद्यमहोल्लासैः शिवे भक्तिं समाश्रयन् ॥१२॥

---

## अध्याय – १३९

### रुद्रतीर्थ र गोलोकेश्वर शिवलिङ्गको महिमा

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! त्यस सर्वेश्वर लिङ्गलाई नमस्कार गरेर विरूपाक्ष जहाँ गोलोकेश्वर भगवान्‌को लिङ्ग थियो, त्यसै ठाउँमा गए। विरूपाक्षले रुद्रतीर्थमा स्नान गरेर जल–कुश हातमा लिई सङ्कल्प गरेर गोलोकेश्वर भगवान्‌को विधिपूर्वक पूजा गरे। चैत्रकृष्ण षष्ठीका दिन राति उनले त्यस गोलोकेश्वरलिङ्गको पूजा गरे, जाग्राम बसी भक्तिपूर्वक त्यस लिङ्गको माहात्म्य नेमुनिसित सोधे। हे अगस्त्य मुनि ! त्यसपछि सम्पूर्ण वृत्तान्त जान्ने ती मुनिले आफ्ना भक्त विरूपाक्षलाई त्यस तीर्थको र लिङ्गको माहात्म्य बताउनुभयो ॥१–४॥

नेमुनिले भन्नुभयो – अघि यस लिङ्गलाई पृथ्वीतलमा ब्रह्माजीले आराधना गर्नुभएको थियो। लिङ्गस्वरूप भगवान् शङ्कर गोलोकबाट आएर यहाँ बस्नुभयो। त्यसै कारणले यस लिङ्गलाई देवता र ऋषिहरूले गोलोकेश्वर भनेका हुन्। हे विरूपाक्ष ! यस ठाउँमा अघि कुनै राक्षस मुक्त भएको छ, यो कुरा सुन। हे विरूपाक्ष ! अघि केकर नाम गरेको कुनै राक्षस थियो। ऊ उज्जयिनी पर्वतको जङ्गलमा सधैँ बस्ने गर्दथ्यो ॥५–७॥

ज्येष्ठमहिनाको शुक्लपक्ष चतुर्दशीका दिन त्यो राक्षस मृगमांस खाएर प्यासले आत्तिँदै पानी पिउन यस ठाउँमा आयो र यस तीर्थको जल पिएर ज्ञानी बन्यो। उसले बलेको दियोको ज्वालाजस्तो यस लिङ्गलाई देख्यो। एक वर्षसम्म पवित्र भएर त्यो राक्षस यहाँ बस्यो। उसले फूल र जलले भक्तिपूर्वक यस लिङ्गको पूजा गर्‍यो। माघकृष्ण अष्टमीका दिन मुनिजस्तै भोकै बसेर बुद्धिपूर्वक व्रत गर्दागर्दै काल आयो र उसले प्राण त्याग्यो। शिवजीमा भक्ति लगाएको हुँदा गीत, बाजा र उत्सवका साथ प्रमथगणहरूले त्यसलाई यानमा राखेर शिवजीको लोकमा लगे ॥८–१२॥

---

१. गोलोकेश्वरमर्चितः, इति न.सं.पु.पाठः।
२. लिङ्गं पूज्य महानिशि, इति न.सं.पु.पाठः।
३. स्वभक्तिने, इति न.सं.पु.पाठः।
४. समर्चितः, इति न.सं.पु.पाठः।

सोऽप्यभवद्विरूपाक्ष ! रुद्रगणवरोऽनिशम्। नागायुतबलोपेतः केकरो नाम विश्रुतः ॥१३॥
भूयः शृणु विरूपाक्ष ! चैतत्तीर्थप्रशंसनम्। इन्द्रो मुक्तः पुरा चाऽत्र दुःखार्त्तो मित्रहत्यया ॥१४॥
आसीत्कश्यपसूनुश्च वृत्रो नाम महाबलः। तेन तप्तं सहस्राब्दं दिव्यं पुरा हिमाचले ॥१५॥
तेन चाभ्यर्थितो भद्रो वरो त्रैलोक्यक्षोभकः। मा हन्तव्यो दिवारात्रौ वरान्तेऽहञ्च शत्रुणा ॥१६॥
मद्दासतां सदा कुर्याच्छक्रो[५] विशेषतः प्रभो। मत्समक्षे रणे[६] स्थातुं शक्ता भवन्तु नामराः ॥१७॥
एवं प्रार्थ्य[७] वरं ब्रह्मन् ! लब्धवरस्ततोऽसुरः। राज्यञ्चकार चाऽत्रैव प्रलुण्ठ्य चाऽमरावतीम् ॥१८॥
शक्रोऽपि तद्भयात्स्वर्गे कम्पितवान् भृशं मुहुः। अजस्रञ्च यतस्तेन लुण्ठिता ह्यमरावती ॥१९॥
नारदमाश्रयच्छक्रस्तद्भयाच्च त्रिविष्टपे। तिष्ठाम्यत्र कथं तात तस्मादित्यवदन्मुनिम् ॥२०॥
नारदोऽपि च वृत्रेण समं मैत्रीञ्चकार ताम्। साम्ना दाम्ना च भेदेन दण्डेन नीतिभिस्तदा[८] ॥२१॥
एवं कृत्वा च[९] वृत्रेण कञ्चित्कालं निनाय सः। पुरुहूतस्तदा[१०] स्वर्गे मित्रत्वेन मुदाऽन्वितः ॥२२॥
तथापि नैव लेभे च पुरुहूतः शिवं द्विज। हृदये दूयमानस्तच्छिद्रान्वेषणतत्परः ॥२३॥
भाद्रमासे सिते पक्षे चैकादश्यां पुरन्दरः। भक्त्या प्राप वरं[११] भद्रमेतल्लिङ्गप्रसेवनात् ॥२४॥
तद्द्वादश्यां स चाऽध्यासीच्छक्रो मार्गह्रदे तृषा। लब्धवरो महादेवाद् वृत्रं हन्तुमना अभूत् ॥२५॥

---

हे विरूपाक्ष ! दश हजार हात्तीको बल भएको केकर नामले प्रसिद्ध त्यो राक्षस आज भगवान् शङ्करको उत्तम गण भएर बसेको छ। हे विरूपाक्ष ! यस तीर्थको माहात्म्य फेरि सुन। यहाँ अघि मित्रहत्याको पापले पीडित भएका इन्द्र मुक्त भएका थिए ॥१३-१४॥

कश्यपका छोरा अत्यन्त बलिया वृत्रासुर नाम गरेका राक्षस थिए। उनले अघि हिमालयमा दिव्य एक हजार वर्षसम्म तपस्या गरे। उनले तीनै लोकलाई तर्साउन सक्ने वर मागे। अन्त्यमा दिन अथवा रातमा शत्रुले मलाई मार्न नसकोस् भन्ने वर पनि पाए। उनले 'हे प्रभु ! विशेष गरी इन्द्र सधैं मेरो दास बनोस्, मेरो अगाडि युद्धमा देवताहरू टिक्न नसकून्' भन्ने वर मागेर सो वर प्राप्त गरिसकेपछि ती राक्षसले अमरावती लुटे अनि त्यसै ठाउँमा राज्य गर्न थाले ॥१५-१८॥

तिनको डरले इन्द्र पनि अत्यन्त काँपे, किनभने पटक-पटक ती वृत्रासुरले अमरावती लुटेका थिए। त्यसपछि वृत्रासुरको डरबाट जोगिन इन्द्रले नारदको शरण लिए। उनले हे ऋषि ! म यो स्वर्गमा कसरी बसौं ? भने। नारदले पनि इन्द्रको वृत्रासुरसँग साम, दाम आदि चार प्रकारका नीतिद्वारा बिस्तारै मित्रता बनाइदिनुभयो। यसरी वृत्रासुरसँग मिलेर इन्द्रले केही समय बिताउँदै उनी स्वर्गमा सँगै मित्रभावले प्रसन्न भएर रहे ॥१९-२२॥

हे विरूपाक्ष ! तैपनि इन्द्रलाई हृदयमा शान्ति भएन। उनी खिन्न भएर वृत्रासुरको छिद्र खोज्न थाले। भाद्रशुक्ल एकादशीका दिन इन्द्रले यस लिङ्गको भक्तिपूर्वक सेवा गरेको हुँदा कल्याणकारी वर पाए। त्यसैले द्वादशीका दिन तिर्खाएर इन्द्र बाटमा पर्ने तलाउमा बसेका थिए। उनले महादेवबाट वर पाएको हुँदा वृत्रासुरलाई मार्ने विचार गरे ॥२३-२५॥

---

५. भूयाच्छक्रः, इति न.सं.पु.पाठः।
६. मेऽध्यक्षे सङ्गमे, इति न.सं.पु.पाठः।
७. याच्य, इति न.सं.पु.पाठः।
८. सामेन नीतिना शक्रञ्चतुर्भिर्नीतिभिः शनैः, इति न.सं.पु.पाठः।
९. सम्मील्य, इति न.सं.पु.पाठः।
१०. समम्, इति न.सं.पु.पाठः।
११. भक्त्याऽलभद्वरम्, इति न.सं.पु.पाठः।

तस्मिन्नवसरे वृत्रस्तद्ध्रदमाययौ मुदा। पार्श्वचराँश्च सन्त्यज्य मित्रप्रतीतजीवनः ॥२६॥
भो भो मित्र ! किमध्यासीरेतद्ध्रदे सुनिर्जनः। इत्युक्त्वा स समासीच्च वृषान्तिके च निश्चितम् ॥२७॥
ततः शक्रो रुषाऽविष्टो वृत्रं प्रेक्ष्याशु निर्जनम्। प्रातः ससर्ज नीहारं लोकतिरस्करं भृशम् ॥२८॥
वृत्रेणाप्रेक्ष्यमाणोऽसौ पुरहूतस्त्वरान्वितः। वज्रेणैव जघानाशु तं वृत्रं तद्ध्रदे भृशम् ॥२९॥
मृते वृत्रे च तद्धत्या समग्रहीत्पुरन्दरम्। हत्यारूढस्तदा शक्रो न लेभे शं क्षणं ह्यपि ॥३०॥
यत्र यत्र वृषा याति तत्र तत्र विडौजसः। अनुप्रयाति तद्धत्या छायेव व्रजति सदा ॥३१॥
एवं सहस्रवर्षञ्च मित्रहत्यायुतोऽभवत्। नैव तस्थौ[१२] सुधर्मायां शच्याश्च गर्हितोऽनिशम् ॥३२॥
ततो दुःखातुरः शक्रः प्रयाणे संयुतः सदा। अपृच्छन्नारदं हेतुं हत्यामुक्तेश्च[१३] भक्तितः ॥३३॥
कथम्मोक्ष्याम्यहं तात चैतद्धत्योढकिल्विषात्। न लेभेऽपि सदा शर्म प्रयाणे वाञ्छितं विभो ॥३४॥
आकर्ण्य तद्वचः सद्यः शक्राय नारदः पुनः। व्याजहार शुभं वाक्यं हत्यामोचनहेतुकम् ॥३५॥

नारद उवाच

सत्यमुक्तं त्वया शक्र न त्यक्तस्त्वञ्च हत्यया। सर्वतीर्थेष्वपि स्नानान्मित्रहत्यापराधतः[१४] ॥३६॥
हिमवद्गह्वरे पुण्ये नेपालाख्ये महीवरे। तत्र भूभृदधोभागे चास्ते तीर्थोत्तमं वृषन्[१५] ॥३७॥
रुद्रतीर्थे वरे तत्र स्नाहि भक्त्या पुरन्दर। तत्रैव स्नानमात्रेण त्वं हत्यया प्रमुच्यसे ॥३८॥
स्नात्वा तत्रैव भक्त्या वै गोलोकेश्वरमर्चय। कृष्णाष्टम्यां विशेषेण कार्त्तिकस्य पुरन्दर ॥३९॥

---

त्यसैबेला मित्र हो भन्ने विश्वास गरेर आफ्ना पार्श्ववर्तीलाई छोडी वृत्रासुर प्रसन्न भएर त्यस तलाउमा आए र भने– हे मित्र ! एक्लै यस तलाउमा किन बस्नुभयो ? यति भन्दै उनी इन्द्रको नजिकै गएर बसे। त्यसपछि इन्द्रले एक्लो वृत्रासुरलाई देखेर रीसले चूर हुँदै बिहानीका समयमा संसारै नदेखिने गरी गाढा कुहिरोको सृजना गरे ॥२६–२८॥

कुहिरोका कारण वृत्रासुरले देख्न छाडेपछि इन्द्रले हत्त न पत्त वज्रले त्यस दहको किनारमा वृत्रासुरलाई प्रहार गरे र उसलाई मारे। वृत्रासुर मरेपछि तिनको हत्याले इन्द्रलाई समात्यो। हत्याग्रस्त भएका इन्द्रले एकछिन पनि शान्ति पाएनन्। जहाँ जहाँ इन्द्र जान्थे, त्यसै त्यसै ठाउँमा छायाजस्तै गरी सधैँ पछि लागेर वृत्रहत्याबाट उत्पन्न ब्रह्महत्याको पाप पनि सँगै हिँड्दथ्यो ॥२९–३१॥

यसरी हजारौँ वर्षसम्म मित्रहत्या लागेका इन्द्र निन्दित भएर देवताको सभामा र इन्द्राणीसँग पनि बसेनन् ॥३२॥ यसप्रकार इन्द्र ब्रह्महत्याबाट प्राप्त दुःखमा चौतारिँदै हिँडिरहेको बेला नारदलाई भेटेर भक्तिपूर्वक उनले सो दुःखबाट मुक्त हुने उपाय सोधे– 'हे मुनि ! यो हत्याजन्य पापबाट म कसरी मुक्त हुन्छु ? हे प्रभु ! जहाँ गए पनि मैले कहिल्यै पनि चाहेको सुख पाइनँ'। इन्द्रमहाराजको प्रार्थना सुनेर इन्द्रलाई ब्रह्महत्याको पापबाट मुक्त गराउने किसिमको वचन बताउँदै नारदजी भन्न लाग्नुभयो ॥३२–३५॥

नारदले भन्नुभयो – हे इन्द्र ! तिमीले ठीकै भन्यौ, तिमीलाई सबै तीर्थमा स्नान गरे पनि ज्यादै गह्रौँ मित्रहत्याको पापले छोडेको छैन। हे इन्द्र ! नेपाल नाम गरेको भूभागको हिमालयको गुफामा पहाडको फेदीमा उत्तम रुद्रतीर्थ छ। हे इन्द्र ! त्यस उत्तम रुद्रतीर्थमा गएर स्नान गर। त्यहाँ स्नान गरेमा मात्रै पनि तिमी ब्रह्महत्याको पापबाट मुक्त हुनेछौ। हे इन्द्र ! विशेष गरी कार्तिककृष्ण अष्टमीका दिन त्यहाँ स्नान गरेर भक्तिपूर्वक गोलोकेश्वर भगवान्‌को पूजा गर ॥३६–३९॥

---

१२. नाभितस्थौ, इति न.सं.पु.पाठः।
१३. तन्मोचनस्य, इति न.सं.पु.पाठः।
१४. ....हत्यागरिष्ठतः, इति न.सं.पु.पाठः।
१५. चासीत्तीर्थोत्तमं वृषन्, इति न.सं.पु.पाठः।

ऋषिरुवाच

आकर्ण्य तद्वचः शक्रः स्वात्मनः पथ्यमीरितम्। आययौ त्वरितञ्चाऽत्र स्वर्गसोपानशैलतः ॥४०॥
सर्वतीर्थेषु संस्नाय क्षेत्रे पाशुपते वरे। न मुमोच वृषा गङ्गां विरूपदृक् कदाचन[१६] ॥४१॥
अत्र सस्नौ मुदा भक्त्या रुद्रतीर्थे पुरन्दरः। कृष्णाष्टम्यां शिवात्माऽसौ कार्त्तिकस्य यथाविधि ॥४२॥
समुत्तीर्य जलाच्छक्रः स्वमात्मानं ददर्श च। त्यक्तस्तद्धत्यया सद्यश्चाऽभवल्लघुविग्रहः ॥४३॥
हर्षं लेभे ततः शक्रः प्रेक्ष्यात्मानं भृशं तदा। तीर्थं ननाम तुष्टाव वचोभिस्त्रिविधैः पुनः[१७] ॥४४॥
सर्वपापविनाशिन्यै शिवायै सततं नमः। रुद्रस्नानप्रपूतायै जलमूर्त्यै नमो नमः ॥४५॥
गोलोकेशं समभ्यर्च्य आरोहत् स्वर्गसत्पथम्[१८]। तस्थौ मुदा ह्रदे शक्रः शच्या देवगणैः सह ॥४६॥
सहस्राब्दञ्च दिव्यानां त्यक्त्वा स्वर्गं पुरन्दरः। भ्रमति स्म रसां पूर्णां हत्यादुःखातुरोऽनिशम् ॥४७॥
ततो देवर्षयो ज्ञात्वा चाऽभिषेकं ददुस्तदा। तद्ध्रदे चैव शक्राय द्यौष्पतित्वे यथाविधि ॥४८॥
भाद्र्यां च पूर्णिमायान्ते तद्ध्रदाय वरं शुभम्। ब्रह्मादयो ददुर्विप्र ! तच्छृणु वच्मि तेऽधुना ॥४९॥
यो वा को वा नरो वापि संस्नाति चाऽत्र तद्दिने। चतुस्त्रिंशत्क्रतूनां हि सम्पूर्णं फलमाप्नुयात्[१९] ॥५०॥
इति दत्वा वरं देवास्तद्ध्रदाय मुदाऽन्विताः। शक्रस्यैकांशमास्थाय ययुः स्वर्गञ्च तत्र वै ॥५१॥
भाद्र्याञ्च पूर्णिमायां यः स्नात्वा तत्र प्रपश्यति। इन्द्रस्य प्रतिमां दिव्यां तस्य पुण्यफलं शृणु ॥५२॥
जन्मार्जितैनसा मुक्तो देहान्ते च भवेत्खलु। त्रिधा स्नानाच्च शक्रोऽसौ सत्यं सत्यं न संशयः ॥५३॥
कार्त्तिक्यां स्नाति यश्चैव[२०] कृष्णाष्टम्यां विशेषतः। मित्राणां पातकैश्चाऽन्यैर्विमुच्यते च तत्क्षणात् ॥५४॥

---

नेमुनिले भन्नुभयो – नारदमुनिको भनाइ सुनेर त्यसैमा आफ्नो हित सम्झी इन्द्र स्वर्गको भ्याङ बनेको स्वर्गसोपान पर्वतबाट तुरुन्त यहाँ आए। हे विरूपाक्ष ! त्यसपछि इन्द्रले सबै तीर्थमा स्नान गरेर अत्यन्त पवित्र पाशुपत क्षेत्रमा गए र त्यहाँ रहेका कुनै क्षेत्रमा पनि उनले स्नान गर्न छोडेनन्। त्यसपछि इन्द्रले कार्तिककृष्ण अष्टमीका दिन रुद्र नै बनेर विधिपूर्वक भक्तिले प्रसन्न हुँदै रुद्रतीर्थमा स्नान गरे ॥४०-४२॥

पानीबाट उत्रेपछि इन्द्रले आफू त्यस हत्याबाट मुक्त भएको र आफ्नो शरीर तुरुन्त हलुको भएको अवस्थामा आफूलाई पाए। आफू ब्रह्महत्याको दोषबाट मुक्त भएको देखेपछि इन्द्र अत्यन्त खुसी भए। उनले तीनै किसिमका भक्तिद्वारा तीर्थलाई नमस्कार गरे। सम्पूर्ण पापलाई नाश गर्ने भगवतीलाई बारम्बार नमस्कार छ। शिवजीले स्नान गर्नुभएका कारण अत्यन्त पवित्र भएकी जलमूर्तिलाई बारम्बार नमस्कार छ। त्यसपछि गोलोकेश्वर भगवान्लाई पूजा गरेर इन्द्र स्वर्गको सिँढीमा चढे। अनि उनी इन्द्राणी र देवताहरूका साथ आनन्दसित बसे। दिव्य एक हजार वर्षसम्म इन्द्रले स्वर्ग छोडेर हत्याले पीडित हुँदै निरन्तर सम्पूर्ण पृथ्वी घुमेका थिए ॥४३-४७॥

देवताहरूले त्यो कुरा थाहा पाएर त्यसै तलाउमा इन्द्रलाई स्वर्गको स्वामी बन्नका लागि विधिपूर्वक अभिषेक दिए। भाद्रपूर्णिमाको दिन ब्रह्मा आदि देवताहरूले रुद्रतीर्थनामक त्यस तलाउलाई पनि उत्तम वर दिए। त्यो कुरा अब तिमीलाई बताउँछु, सुन। चाहे जोसुकै मानिस किन नहोस्, त्यसले भाद्र पूर्णिमाको दिन यहाँ स्नान गर्‍यो भने चौँतीस यज्ञ गरेको जुन फल हुन्छ, त्यो पाउँछ। यसरी देवताहरूले त्यस तलाउलाई वर दिएर प्रसन्न हुँदै इन्द्रको एक अंश त्यहाँ राखेर सबै स्वर्ग गए ॥४६-५१॥

भाद्रपूर्णिमाको दिन जसले त्यहाँ गएर दिव्य इन्द्रको मूर्तिको दर्शन गर्छ त्यसको पुण्यफल सुन। तीन किसिमको भक्तिले युक्त भएर जसले स्नान गर्छ त्यसले गर्दा त्यो व्यक्ति जन्मभरि गरेका पापबाट मुक्त भएर मरेपछि इन्द्र नै हुन्छ, यो साँचो हो, यसमा शङ्का छैन। जुन मानिसले विशेष गरी कार्तिककृष्ण अष्टमीका दिन यहाँ स्नान गर्छ त्यो व्यक्ति मित्रहत्या र अरू किसिमका पापबाट तुरुन्तै मुक्त हुन्छ ॥५२-५४॥

---

१६. न मुञ्चति वृषा गङ्गा कुत्रापि च विरूपदृक्, इति न.सं.पु.पाठः।
१७. तीर्थं ननाम भक्त्या च तुष्यव त्रिविधैः पुनः, इति न.सं.पु.पाठः।
१८. स्वर्गसोपानमारुहत्, इति न.सं.पु.पाठः।
१९. यत्तदस्ति फलं लभेत्, इति न.सं.पु.पाठः।
२०. स्नायते योऽत्र, इति न.सं.पु.पाठः।

तक्षकस्य ह्रदे स्नाहि कर्कोटकह्रदे पुनः । संस्नानाच्चौषधिनद्यां मीनतीर्थे तथा पुनः ॥५५॥
तक्षकस्य ह्रदे स्नानाद्विषभयं विनश्यति । कर्कोटकह्रदे विप्र ! दशगवां फलं भवेत्[२१] ॥५६॥
ओषध्या स्नानतः स्नाता[२२] न रोगैरभिभूयते । स्वर्णनद्यां नरः स्नानात् स्वर्णदशपलं फलम् ॥५७॥
भूयो ह्यतो गच्छ विरूपनेत्र क्रोशैकमात्रे सहसा विदूरे ।
स्नाहीह पुण्ये खलु मीनतीर्थे तद् द्वादशीत्यादितिथौ सभक्ति[२३] ॥५८॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां रुद्रतीर्थगोलोकेश्वरयोर्माहात्म्यं नाम ऊनचत्वारिंशदुत्तरशततमोऽध्यायः ॥१३९॥

---

हे विरूपाक्ष ! तिमी तक्षकदहमा स्नान गर । अनि कर्कोटकदह, औषधिनदी र मीनतीर्थमा पनि स्नान गर । तक्षकदहमा स्नान गर्‍यो भने विषबाट हुने भय नाश हुन्छ । कर्कोटक दहमा स्नान गरे दश गाई दान गरेको फल प्राप्त हुन्छ । जसले औषधिनदीमा स्नान गर्छ त्यसलाई रोगले सताउँदैन । स्वर्णनदीमा स्नान गर्‍यो भने त्यसले दशपला सुन दान गरेको फल पाउँछ । यहाँबाट एक कोस टाढा रहेको पवित्र मीनतीर्थमा तिमी तुरुन्त जाऊ । त्यसपछि त्यसै द्वादशीको पवित्र तिथिका दिन त्यहाँ स्नान गर ॥५५-५८॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा रुद्रतीर्थ र गोलोकेश्वरको माहात्म्यनामक एकसय उनन्चालिसौं अध्याय पूरा भयो ।

---

२१. लभेत्, इति न.सं.पु.पाठः । २२. स्नायते यो हि, इति न.सं.पु.पाठः ।
२३. तद्द्वादशी पुण्यतरे तिथौ च, इति न.सं.पु.पाठः ।

# चत्वारिंशदुत्तरशततमोऽध्यायः

## मीनतीर्थमहिमा

### स्कन्द उवाच

भूयोऽगमद्विरूपाक्षो मुनिना तेन वै समम्। मीनतीर्थञ्च यत्रासीन्मीनरूपैः सुरैः सह ॥१॥
चैत्रकृष्णस्य सप्तम्यां सस्नौ भक्त्या यथाविधि। सङ्कल्प्य विधिवत्तीर्थे कुशहस्तो विरूपदृक् ॥२॥
तत्र स्नात्वा स चाऽष्टम्यां मातृतीर्थे घटोद्भव। अगमत्स द्विजः सिद्धः सस्नौ तत्र यथासुखम् ॥३॥
ततोऽपृच्छन्मुनिं सिद्धो माहात्म्यं तीर्थसम्भवम्। आकर्ण्य तद्वचस्तस्मै व्याजहार वचो मुनिः ॥४॥

### नेमुनिरुवाच

शृणु विप्र ! प्रवक्ष्यामि मीनतीर्थप्रशंसनम्। सिद्धर्षिभिः सुरैर्दैत्यैः सेवितं सततं मुदा ॥५॥
विष्णुर्दधार पूर्वस्मिन्मीनरूपं यथा विभुः। ततः प्रभृति चाऽत्राऽसौ मीनरूपः समासते ॥६॥
आषाढ्याञ्चैत्रकृष्णायां द्वादश्याञ्च महातिथौ। अवततार विष्णुर्वै मीनाङ्गेन सुरैः सह ॥७॥
क्षेत्रे पाशुपते पुण्ये ज्ञात्वाऽवात्सीद्धरिः सदा। मीनरूपेण देवैश्च सार्धञ्च मीनविग्रहैः ॥८॥
तत्र स्नात्वा दिवं याति सर्वपापैर्विवर्जितः। आषाढे वा मधौ माघे कार्त्तिके च विशेषतः ॥९॥
द्वादश्याञ्च विशेषेण पक्षयोरुभयोरपि। मोक्षदा कृष्णपक्षस्य भूतिदा स्यात्सितस्य च ॥१०॥
मातृतीर्थस्य माहात्म्यं शृणु वक्ष्याम्यहं पुनः। यत्र च स्नानमात्रेण मातृऋणैः प्रमुच्यते ॥११॥
आसीत्पाशुपते क्षेत्रे सुमेधा नाम विश्रुतः। द्वादशाब्दवया वैश्यः क्रीडाभोजनतत्परः ॥१२॥
मातरि स्वर्गतायां स[1] क्रन्दमानो मुहुर्मुहुः। प्रतिमाञ्च समालम्ब्य रुरोदाऽसौ भृशं हरेः ॥१३॥

---

## अध्याय - १४०

### मीनतीर्थको महिमा

कुमार स्वामीले भन्नुभयो – त्यसपछि नेमुनिलाई साथमा लिएर विरूपाक्ष मीनतीर्थमा मत्स्यनरूप लिएर देवताहरूका साथ भगवान् बस्नुभएको ठाउँमा गए। चैत्रकृष्ण सप्तमीका दिन विरूपाक्षले हातमा जल–कुश लिएर तीर्थमा सङ्कल्प गरी सभक्ति विधिपूर्वक पूजा गरे। हे अगस्त्य मुनि ! अष्टमीका दिन मातृतीर्थमा स्नान गरेर ती विरूपाक्ष सिद्धतीर्थमा गए। उनले त्यस सिद्धतीर्थमा आनन्दसित स्नान गरे। त्यसपछि सिद्ध विरूपाक्षले नेमुनिसित त्यस तीर्थको माहात्म्य र उत्पत्तिका बारेमा सोधे। नेमुनिले पनि त्यो कुरा सुनेर उनलाई यसरी भन्नुभयो ॥१–४॥

नेमुनिले भन्नुभयो – हे विरूपाक्ष ! म पहिले सिद्ध, ऋषि, देवता र राक्षसहरूद्वारा प्रसन्नापूर्वक सधैँ सेवा गरिने मीनतीर्थको माहात्म्य बताउँछु। भगवान् विष्णुले जब मत्स्य–अवतार लिनुभएको थियो, त्यसै समयदेखि मत्स्यरूप लिएर भगवान् यसै ठाउँमा बस्नुभएको छ। आषाढको पूर्णिमा, चैत्रकृष्ण द्वादशी महातिथिका दिन भगवान् विष्णुले देवताहरूका साथ यहाँ मत्स्य–अवतार लिनुभएको हो ॥५–७॥

पवित्र पशुपतिको क्षेत्र हो भन्ने ठानेर भगवान् विष्णु मत्स्यरूपधारी देवताहरूका साथ मत्स्यरूप लिएर यहाँ बस्नुभएको छ। त्यस ठाउँमा आषाढशुक्ल पूर्णिमा अथवा विशेष गरी चैत्र, माघ र कार्तिक महिनामा स्नान गऱ्यो भने सम्पूर्ण पापबाट मुक्त भएर मानिस स्वर्ग जान्छ। कृष्ण र शुक्ल दुबै पक्षमध्ये विशेष गरी कृष्णपक्षको द्वादशीका दिन स्नान गऱ्यो भने त्यसको फलस्वरूप मोक्ष प्राप्त हुन्छ। शुक्लपक्षको द्वादशीका दिन स्नान गऱ्यो भने त्यस द्वादशीले ऐश्वर्य प्रदान गर्दछ। अब म फेरि मातृतीर्थको माहात्म्य बताउँछु। जुन तीर्थमा स्नान मात्रै गऱ्यो भने पनि मानिस मातृ–ऋणबाट मुक्त हुन्छ। पशुपतिक्षेत्रमा विभिन्न खेल खेल्न र मीठो भोजन गर्न मन पराउने बाह्र वर्षको उमेरको सुमेधा नामक वैश्य थियो। उसकी आमा मरेपछि बारम्बार डाँको छोडेर त्यो वैश्यबालक भगवान्‌को तस्वीरलाई समातेर खूबसित रुन थाल्यो ॥८–१३॥

---

१. तन्मातरि मृते वैश्यः, इति न.सं.पु.पाठः।

विष्णो ! मे मातरं सद्यो दर्शयितुं भवान् क्षमः। यां विना जीवितुञ्चाऽहं क्षणमपि च नोत्सहे ॥१४॥
ततो हरिस्तमाश्वास्य विप्ररूपेण तत्क्षणात्। संगृह्य तत्करञ्चैतत्क्षेत्रञ्चाऽभ्रामयन्मुदा[२] ॥१५॥
चैत्रकृष्णचतुर्दश्याञ्चाऽत्राऽगमन्मुदा द्विज। हरिणा विप्ररूपेण कुहावस्थापयच्च तम्[३] ॥१६॥
तत्कुण्डेऽदर्शयद्वैश्यं तदा तन्मातरं द्विज। स्नापयित्वा च तत्तीर्थे द्विजरूपो हरिश्च तम् ॥१७॥
मुमुदे प्रेक्ष्य[४] वैश्योऽसौ स्वमातरं जलान्तरे। प्रणम्य च हरिं भक्त्या व्याजहार वचः पुनः ॥१८॥

वैश्य उवाच

ब्राह्मण ! त्वत्प्रसादाद्धि दृष्टा माता मया पुनः। आनीयतां गृहानेषा स्थाप्यतां पूर्ववत्सुखम् ॥१९॥
जनन्या च विना तात सर्वो भवेदनाथवान्। ग्रामे राज्ये तथा गेहे सर्वत्राऽरण्यवन्मम ॥२०॥

ब्राह्मण उवाच

मैवं वक्तव्यमाश्चर्यं शिवायै भवतेह च। जन्मान्तरे सैव माता भविष्यति न संशयः ॥२१॥
अन्नफलजलान्याशु दद्याश्चाऽस्यै सुभक्तितः। भविष्यति च सा तृप्ता दास्यति[५] ते वरं शुभम् ॥२२॥

नेमुनिरुवाच

विष्णोर्वाक्यं समाकर्ण्य ज्ञानवान् सोऽभवत्तदा। ददौ पिण्डं जलं मात्रे भक्त्या च विधिवद् द्विज ॥२३॥
सापि तृप्ता ददौ चाऽत्र सुताय हर्षिता वरम्। भो भो पुत्र ! त्वमद्यादि सार्वभौमो भव ध्रुवम् ॥२४॥
सार्वभौमो नृपो भूत्वा चाऽभौक्षीत्पृथिवीमिमाम्। सहस्राब्दं समं मात्रा देहान्ते स्नानतो ह्यतः ॥२५॥

---

हे विष्णु ! मेरी आमालाई देखाइदिन हजुर मात्र समर्थ हुनुहुन्छ। म आमाविना एकछिन पनि बाँच्न चाहन्न ॥१४॥ त्यसपछि भगवान् विष्णुले तुरुन्त ब्राह्मणको रूप लिएर त्यस बालक वैश्यको हात समाती त्यस क्षेत्रको भ्रमण गराउनुभयो ॥१५॥ हे विरूपाक्ष ! चैत्रकृष्ण चतुर्दशीका दिन उनीहरू प्रसन्न हुँदै मातातीर्थमा यहाँ आए र ब्राह्मणरूपधारी विष्णुले अमावास्याका दिन त्यसलाई स्नान गराउनुभयो ॥१६॥ त्यसबखत त्यस वैश्यलाई त्यस तीर्थमा स्नान गराएर ब्राह्मणरूपधारी भगवान्ले त्यसै कुण्डभित्र वैश्य बालकलाई उसकी आमा देखाइदिनुभयो ॥१७॥ त्यो वैश्य बालक आफ्नी आमालाई जलभित्र देख्न पाउँदा अत्यन्त प्रसन्न भयो। उसले भगवान् विष्णुलाई भक्तिपूर्वक प्रणाम गरेर भन्यो ॥१८॥

वैश्यले भन्यो – हे ब्राह्मण ! हजुरको कृपाले गर्दा मैले फेरि आमालाई देख्न पाएँ। उहाँलाई जसरी हुन्छ, घरमा ल्याइदिनुहोस् र अघिजस्तै गरेर आनन्दसित राखिदिनुहोस् ॥१९॥ आमाविना सबै अनाथ हुन्छ। गाउँ, राज्य र घर सबै मेरा निमित्त जङ्गलजस्तै भएका छन् ॥२०॥

ब्राह्मणरूपधारी हरिले भन्नुभयो – दिवङ्गत भई भगवती शिवासमान भएकी आमाका लागि तिमीले यस्तो आश्चर्यजनक कुरा गर्नु हुँदैन, अर्को जन्ममा यिनै तिम्री आमा हुनेछिन्, यसमा शङ्का छैन ॥२१॥ अन्न, फल र जल भक्तिपूर्वक यिनलाई तुरुन्त देऊ। त्यसबाट तृप्त भएर तिम्री आमाले तिमीलाई कल्याणमय वर दिनेछिन् ॥२२॥

नेमुनिले भन्नुभयो – हे विरूपाक्ष ! विष्णुको कुरा सुनेर त्यो वैश्य बालक ज्ञानी भयो। उसले पिण्ड र तर्पण सभक्ति विधिपूर्वक आमालाई दियो ॥२३॥

आमाले पनि तृप्त भएर खुसी हुँदै छोरालाई वर दिइन्। हे छोरा ! तिमी आजदेखि चक्रवर्ती राजा भए ॥२४॥ आमा मरेपछि यसै तीर्थमा स्नान गरेको हुँदा त्यस वैश्यले हजार वर्षसम्म मुचुकुन्द नामक चक्रवर्ती राजा भएर यस पृथ्वीको भोग गऱ्यो ॥२५॥

---

२. ... भ्रामयद्धरिः, इति न.सं.पु.पाठः।
३. कुहौ संस्नापयद्धि तम्, इति न.सं.पु.पाठः।
४. प्रेक्ष्य मुमोद, इति न.सं.पु.पाठः।
५. ददाति, इति न.सं.पु.पाठः।

मुचुकुन्दो नृपः सोऽभूद्विष्णुलोकं पुरागमत्। निष्कण्टकां रसां भुक्त्वा मात्रा सह विरूपदृक् ॥२६॥
स्नात्वा करोति यः श्राद्धं मधोः कृष्णकुहौ जनः[६]। वियोगो न भवेन्मातुर्वार्द्धक्येऽपि सुनिश्चितम् ॥२७॥
तृप्ता भवति तन्माता मातृतीर्थे जलाप्लवात्[७]। ऋणैः प्रमुच्यते सद्यो मातृगर्भाभिवासजैः[८] ॥२८॥
अत्र तीर्थे नरो धीमान् संस्नाति[९] तत्कुहौ च यः। इहलोकं परित्यज्य विष्णुलोकं स गच्छति ॥२९॥
भूयो गच्छ विरूपाक्ष ! वारुण्यां दिश्यतोऽधुना। भराटकेश्वरो यत्र भस्मगङ्गाजलं शुचि[१०] ॥३०॥
अध्यायमेतच्छृणुयान्नरो यः प्राप्नोति तत्स्नानफलं हि नूनम्।
प्राप्नोति भक्त्या यदि सम्यगार्य्यो गर्भस्थमात्रर्णविनाशकं तत् ॥३१॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां मीनतीर्थमाहात्म्यं नाम चत्वारिंशदुत्तरशततमोऽध्यायः ॥१४०॥

---

हे विरूपाक्ष ! ती सार्वभौम राजा मुचुकुन्द नै थिए। तिनी निष्कण्टक अर्थात् शत्रुरहित पृथ्वीको भोग गरेर आमासँगसँगै विष्णुलोक गए। जसले वैशाखकृष्ण अमावास्याका दिन स्नान गरेर यस तीर्थमा श्राद्ध गर्छ त्यसले वृद्धावस्थामा पनि आमाबाट वियोग बेहोर्नुपर्दैन। यहाँ स्नान मात्रै गर्‍यो भने पनि त्यसकी आमा तृप्त हुन्छिन्। आमाको गर्भमा बसेको कारणले लागेको मातृऋणबाट त्यो निश्चय नै मुक्त हुन्छ। यस तीर्थमा जसले अमावास्याको दिन स्नान गर्छ त्यो व्यक्ति मरेपछि विष्णुलोक जान्छ ॥२६-२९॥

हे विरूपाक्ष ! अब तिमी फेरि यहाँबाट पश्चिम दिशातिर जाऊ। त्यहाँ भराटेश्वर महादेव हुनुहुन्छ र भस्मगङ्गाजल रहेको छ। जुन मानिसले यो अध्याय सुन्छ, त्यसले मातृतीर्थमा स्नान गरेको फल पाउँछ। यदि त्यसले राम्रोसित त्यहाँ गएर दर्शन गर्‍यो भने उसले गर्भमा धारण गर्ने आमाको ऋणलाई चुक्ता गर्छ ॥३०-३१॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा मीनतीर्थको माहात्म्यनामक एकसय चालिसौं अध्याय पूरा भयो।

---

६. कृष्णकुहौ दिने, इति न.सं.पु.पाठः।
७. स्नानमात्रेण चात्र वै, इति न.सं.पु.पाठः।
८. मातृगर्भस्थितोद्भवैः, इति न.सं.पु.पाठः।
९. स्नायते, इति न.सं.पु.पाठः।
१०. यतः, इति न.सं.पु.पाठः।

# एकचत्वारिंशदुत्तरशततमोऽध्यायः

भस्मतीर्थ–चन्दनभराटेश्वरशिवलिङ्गयोर्महिमा

स्कन्द उवाच

भूयोऽगमद्विरूपाक्षो मुनिना तेन वै सह। स चन्दनभराटेशो यत्रास्ते सगणो विभुः ॥१॥
अतो वारुणदेशे च धनुषां द्विसहस्रके। चन्दनगिर्यधोभागे भस्मगङ्गोद्भवो यतः ॥२॥
नवधारामहातीर्थे भस्मगङ्गाह्वये पुनः। स चन्दनभराटेशं स्नात्वाऽपूपुजदादरात्[1] ॥३॥
कृष्णाष्टम्यां महारात्रौ चैत्रमासे द्विजो मुनिम्। समभ्यर्च्य हि तल्लिङ्गं पप्रच्छ तत्प्रशंसनम् ॥४॥
आकर्ण्य तद्वचोऽगस्त्य ! भक्त्या पप्रच्छ नेमुनिम्[2]। अवोचत्तन्माहात्म्यञ्च विरूपाक्षाय तत्क्षणात् ॥५॥

नेमुनिरुवाच

शृणु विप्र ! प्रवक्ष्यामि चैतल्लिङ्गप्रशंसनम्। यथोद्भूतं पुरा लिङ्गं भूत्वा चैकाग्रमानसः ॥६॥
सह देव्या विमानेन पुरेश्वर इहागमत्। एतत्क्षेत्रं परिभ्रम्य क्रीडयन्कानने गिरौ ॥७॥
सङ्क्रीड्यात्र स चैत्रादौ फलपुष्पसमाकुले। अदर्शयद्धि रुद्रोऽसौ चैतल्लिङ्गञ्च पार्वतीम् ॥८॥
प्रिये पश्यसि मे मूर्त्तिमिदं लिङ्गमनुत्तमम्। ब्रह्मा विष्णुश्च शक्रश्च प्राप्नुवन्तीप्सितान्यतः ॥९॥
इत्युक्त्वा गगनाद्यानादवतीर्य स ईश्वरः। एतल्लिङ्गे तदा देवीं तिरोदधे प्रदर्शयन् ॥१०॥
पार्वती च तदा भूयश्चाऽवतीर्याऽम्बराद् द्रुतम्। अवात्सीत्तत्र शैलाग्रे सहस्राब्दं मुदा चिरम् ॥११॥
नवधारोद्भवे सानौ संघृष्य चन्दनं शिवा। एतल्लिङ्गं विलिप्यार्या भक्त्याऽर्चति स्म नित्यशः ॥१२॥

---

## अध्याय – १४१

भस्मतीर्थ र चन्दनभराटेश्वर शिवलिङ्गको महिमा

कुमार स्वामीले भन्नुभयो – नेमुनिको उपदेश सुनेपछि विरूपाक्ष भराटेश्वर भगवान् चन्दन लगाएर आफ्ना गणहरूका साथ बस्नुभएको ठाउँमा नेमुनिलाई साथमा लिएर गए। यहाँबाट दुई हजार धनु पश्चिमतिर चन्दनपर्वतको फेदीमा भस्मगङ्गा पैदा भएकी छन्। भस्मगङ्गा नामक नौवटा धारा भएको महातीर्थमा स्नान गरेर उनले चन्दन लगाएका चन्दनभराटेश्वर नामक महादेवको पूजा गरे। चैत्रकृष्ण अष्टमीका दिन राति त्यस लिङ्गको पूजा गरेर विरूपाक्षले त्यसको माहात्म्य नेमुनिसित सोधे। हे अगस्त्य मुनि ! नेमुनिले तिनको भनाइ र प्रश्न सुनेर विरूपाक्षलाई तुरुन्त त्यस तीर्थको माहात्म्य बताउनुभयो ॥१–५॥

नेमुनिले भन्नुभयो – हे विरूपाक्ष ! अघि जसरी यो लिङ्ग पैदा भयो, त्यो र यस लिङ्गको माहात्म्य बताउँछु, एकाग्र मन भएर सुन। अघि पार्वतीलाई साथमा लिएर विमानमा चढी भगवान् शङ्कर यस क्षेत्रमा आउनुभयो र जङ्गल तथा पहाडमा क्रीडा गर्दै भ्रमण गर्नुभयो। फलफूलले युक्त भएको आश्चर्यजनक यस चन्दनाचलमा क्रीडा गरिसकेपछि भगवान् शङ्करले पार्वतीलाई चन्दनभराटेश्वर लिङ्गको दर्शन गराउनुभयो। हे प्रिये ! यो मेरो स्वरूपको मूर्तिमय यस लिङ्गलाई हेर जसको आराधना गरेर ब्रह्मा, विष्णु र इन्द्रले पनि इच्छा लागेको फल प्राप्त गर्न सक्दछन् ॥६–९॥

यति भनेर आकाशमा रहेको यानबाट ओर्लिएर भगवान् शङ्कर पार्वतीलाई यस लिङ्गको दर्शन गराएर अन्तर्धान हुनुभयो। त्यसपछि पार्वती पनि आकाशबाट तुरुन्त ओर्लिएर एक हजार वर्षसम्म आनन्दपूर्वक त्यस पर्वतमा बस्नुभयो। नवधाराको शिखरमा चन्दन घोटेर पार्वतीले यस लिङ्गलाई विलेपन गरी भक्तिपूर्वक सधैँ पूजा गर्नुभयो ॥१०–१२॥

---

१. स्नात्वापूपुजदाद्रितः, इति न.सं.पु.पाठः।
२. स्नात्वापूपुजत् समादरात्, इति न.सं.पु.पाठः।

तस्माल्लोके च विख्यातः स चन्दनभराटकः[३]। चन्दनघर्षणाच्छैलश्चन्दनाद्रिरिति श्रुतः ॥१३॥
सत्ययुगस्य कालान्ते चैतल्लिङ्गस्य साम्प्रतम्। अयुतवत्सरान्ते च माहात्म्यं शृणु सिद्धिभाक् ॥१४॥
आसीत्पुरा द्विजः कश्चिद् ब्रह्मानन्द इति श्रुतः। सुप्रभायां नगर्याञ्च पुत्रवान् धनवान् यतिः ॥१५॥
शिक्षाशीलः प्रगृह्णाति तीर्थेषु सुस्थलेषु च[४]। सदा पर्वसु दानानां चोपजीवी परिग्रहात्[५] ॥१६॥
सत्ययुगस्य[६] कालान्ते ब्रह्मानन्दस्य चार्भकः। पञ्चत्वं प्राप्तवान् सद्यश्चाकस्माद्विगदोऽपि सः ॥१७॥
मृतपुत्रं समादाय चैकपुत्रो द्विजस्तदा। पदे पदे मूर्च्छितोऽसौ[७] लिङ्गान्तिकमिहाययौ ॥१८॥
लिङ्गस्य पुरतो न्यस्य मृतं पुत्रं द्विजो भृशम्। विललाप मुहुश्चात्र मूर्च्छितो निपपात च ॥१९॥
व्याचष्ट वचनं विप्रो रुद्राय लिङ्गमूर्त्तये। ईषद् रुषा प्रविष्टोऽसौ चाऽन्तरे शोकविह्वलः ॥२०॥

ब्रह्मानन्द उवाच

धिगस्तु ते रसे त्वञ्च स्थिरेति कथिता सदा। व्यत्यासत्वञ्च सत्त्वानां यतस्त्वत्तो भवेदिह ॥२१॥
धिगस्तु जीवितुं मेऽद्य व्यत्यासत्वेन यत् स्थितम्। एकात्मको मृतो यस्माज्जीविते मयि चाऽपि च ॥२२॥
युग ! त्वामपि धिग्धिक्च सत्य इति विवक्षितः। ईदृशी मे दशा यस्मात्पुत्रवियोगकर्शिता ॥२३॥
योजनाभ्यन्तरे क्षेत्रे मा कालो विश्यतामिति। पशुपतेश्च लिङ्गस्य चेश्वरेण प्रचोदितम् ॥२४॥
तदाज्ञायाश्च कालेन विपरीतमिदं कृतम्। धिग्धिगस्तु च ते काल ! मद्दशा चेदृशी कृता ॥२५॥
वर्त्तमाने महालिङ्गे चैकदेशे स्थिते मयि। ममात्मजो मृतोऽप्याशु तदाज्ञा वितथा यतः ॥२६॥

---

त्यसैले मानिसहरूले यस लिङ्गलाई चन्दनभराटेश्वर भने। चन्दन घोटेको हुँदा पर्वतको नाम चन्दनाचल रह्यो। हे सिद्ध विरूपाक्ष ! अहिले त्यसको दश हजार वर्ष बित्यो। सत्ययुगको अन्त्यमा के भएको थियो त्यसको सिद्धिदायक माहात्म्य सुन। अघि ब्रह्मानन्द नाम गरेका कुनै योगी र प्रसिद्ध ब्राह्मण सुप्रभा नामक शहरमा बस्थे, उनीहरू पुत्रवान् र धनवान् पनि थिए ॥१३–१५॥

शिक्षाशील भएका ती ब्राह्मण पवित्र तीर्थस्थलहरूमा घुम्दै पर्व–पर्वमा गएर सधैँ दानहरू लिन्थे र जीविका चलाउँथे। सत्ययुगको अन्त्यमा ती ब्राह्मणको छोरोले अकस्मात् कुनै किसिमको रोग नलागेको भए पनि यस संसारलाई छोडिदियो। एउटै छोरा भएका ती ब्राह्मण मरेको छोरालाई लिएर मूर्च्छित हुँदै यसै शिवलिङ्गको नजिक आए। लिङ्गको अगाडि मरेको छोरालाई राखेर ती ब्राह्मणले बारम्बार विलाप गर्दै मूर्च्छा परे र भूमिमा पछारिए। ब्राह्मणले लिङ्गमूर्ति भएका भगवान् शङ्करलाई केही रिसाएर शोकविह्वल हुँदै भने ॥१६–२०॥

ब्रह्मानन्दले भने – हे पृथ्वी ! सदा स्थिर भएर रहने तिमीलाई धिक्कार छ किनभने तिमीमा नै यहाँ प्राणीहरूको उल्टो स्थिति हुन्छ अर्थात् बूढो मर्नु पर्नेमा बाँच्छ र बालक मर्छ। आज मेरो उल्टो जीवनलाई पनि धिक्कार छ। एउटा छोरो थियो, त्यही पनि मऱ्यो, म चाँहि बाँचिरहेको छु। हे युग ! सत्य नामले प्रसिद्ध भएको तँलाई पनि धिक्कार छ, धिक्कार छ किनभने आज पुत्रवियोगले पीडित भएर मेरो यस्तो दुर्दशा गराएको छस् ॥२१–२३॥

यस क्षेत्रको एक योजनभित्र कालले प्रवेश गर्न नपाओस् भनेर पशुपतिलिङ्गभित्र रहेका भगवान् शङ्करले भन्नुभएको थियो। यस ठाउँमा उहाँको आज्ञालाई पनि कालले उल्टो पारिदियो र मेरो यस्तो अवस्था बनायो। हे काल ! तँलाई धिक्कार छ, धिक्कार छ। यसै महालिङ्गको एक देश अर्थात् नजिकै रहेको अवस्थामा मेरो छोरो मऱ्यो। भगवान् पशुपतिको आज्ञा पनि व्यर्थ भयो ॥२४–२६॥

---

३. एतल्लिङ्गं विलेप्यार्या विख्यातश्चन्दनभराटेश्वरः, इति न.सं.पु.पाठः।
४. समसत्सु च, इति न.सं.पु.पाठः।
५. तथापि च, इति न.सं.पु.पाठः।
६. सत्यशेषस्य, इति न.सं.पु.पाठः।
७. मूर्च्छायुक्तः पदेऽजस्रम्, इति न.सं.पु.पाठः।

धिगस्तु ते च मे काल ! विपरीतमभूद्यतः। विना पुत्रेण चाऽद्याऽहं जीवितं नोत्सहेऽधुना ॥२७॥
अद्य त्यक्ष्याम्यहं देहं पुत्रमरणकर्शितम्। एतल्लिङ्गेऽद्य सव्ये च विपरीते स्वयम्भुवि ॥२८॥

ऋषिरुवाच

एवं विलपिते विप्रे पुत्रशोकविकर्शिते। अन्तरिक्षादुवाचेशो ज्योतीरूपं प्रदर्शयन् ॥२९॥

ईश्वर उवाच

मैवं त्वया च वक्तव्यं ममाऽग्रे द्विज साम्प्रतम्। देहं त्यक्तुमना भूत्वा पुत्रशोकाभिकर्शनात् ॥३०॥
त्वत्कृतेन हतः पुत्रस्तव विप्र ! न संशयः। शोचसि त्वं कथञ्चाऽद्य प्रागेव च भविष्यतः ॥३१॥
असत्प्रतिग्रहाद् विप्र ! तीर्थेष्वायतनेषु च। तथा विशिष्टकालेषु प्रतिग्रहः कृतो यतः ॥३२॥
दानस्य पञ्चभागश्च भवेद्देवाय चात्मने। यज्ञायाऽतिथये तूर्यं दानाय क्रमशः पुनः ॥३३॥
एवं चेदात्मनः क्षेमं भृत्यानाञ्च भवेद्दृतम्। अन्यथा चेद् भवेत्तेषां विपरीतः क्षयः सदा ॥३४॥
तस्मात्तवात्मजो विप्र ! चाऽकाले मृतवान् ध्रुवम्। उपायं शृणु मत्तस्त्वं जीविष्यति यतो ह्ययम् ॥३५॥
अस्याञ्च भस्मगङ्गायां संस्नापय[८] सुतं स्वयम्। मत्तीर्थे च ततो गत्वा सञ्जीविष्यति ते सुतः ॥३६॥

ऋषिरुवाच

इत्युक्त्वाऽन्तर्दधे लिङ्गे ज्योतीरूपं प्रदर्श्य च[९]। विहायसा तमुक्त्वा च वनदावानलो यथा ॥३७॥
कार्त्तिकस्य च शुक्लायां नवम्यां मुमुदे द्विजः मुमोद सः। ईश्वरवाक्यमाकर्ण्य ऋतं तज्ज्ञातवानिति ॥३८॥

---

हे काल ! तँलाई धिक्कार छ किनभने आज सबै उल्टो भयो। अब म छोरोविना बाँच्न चाहन्नँ। यस्तो आफैँ उत्पन्न भएको लिङ्ग पनि आज मेरो विपरीत भयो। पुत्रशोकबाट विह्वल बनेको म अब यो शरीर त्याग्न चाहन्छु ॥२७-२८॥

नेमुनिले भन्नुभयो - यसरी पुत्रशोकबाट विह्वल भएका ब्राह्मण विलाप गरिहेका थिए। त्यसैब खत आकाशबाट ज्योतिर्मय स्वरूप देखाउँदै भगवान् शङ्कर भन्न लाग्नुभयो ॥२९॥

ईश्वरले भन्नुभयो - पुत्रशोकले गर्दा शरीर त्याग्न लागेका हे ब्राह्मण ! तिमीले मेरा सामु यसो भन्नु ठीक भएन। हे ब्राह्मण ! तिम्रो पुत्र तिम्रै कुकर्मले गर्दा मरेको हो, यसमा शङ्का छैन। यो कसरी भयो भनेर सोचौला ? अघि तिमीले तीर्थहरूमा, मन्दिरहरूमा तथा ग्रहण आदिको समयमा यजमानहरूबाट दूषित दान लिएका थियौ। दान लिएको पाँच भागमध्ये चार भाग देवता, यज्ञ, अतिथि र आफूलाई छुट्याउनुपर्छ। बाँकी एक भाग दान गर्नुपर्छ। यदि यसो गर्‍यो भने भरणपोषण गर्नुपर्ने परिवारसहित आफ्नो पनि पक्कै कल्याण हुन्छ अन्यथा भयो भने त्यसको उल्टो भएर सबै नाश हुन्छ। हे ब्राह्मण ! तिमीले त्यसको उल्टो गरेकाले तिम्रो छोरो अकालमा मरेको हो। जुन उपायले यो बाँच्छ, त्यो उपाय बताउँछु, सुन। भस्मगङ्गा नाम गरेको मेरो यस तीर्थमा आफैँले लगेर छोरालाई स्नान गराऊ, त्यति गर्‍यौ भने तिम्रो छोरो बाँच्नेछ ॥३०-३६॥

नेमुनिले भन्नुभयो - यति भनेर वन डढेलोले जस्तै आकाशबाटै आफ्नो ज्योतिस्वरूप देखाएर भगवान् शङ्कर त्यसै लिङ्गमा अन्तर्धान हुनुभयो। कार्तिकशुक्ल नवमीका दिन भगवान् शङ्करको यस्तो वाक्य सुनेर "यो साँच्चै हो" भन्ने ठानी ती ब्राह्मण अत्यन्त प्रसन्न भए ॥३७-३८॥

---

८. स्नापयसि, इति न.सं.पु.पाठः। ९. पनवम्याञ्च मुमोद सः, इति न.सं.पु.पाठः।

प्रणम्यैतन्महालिङ्गं स्वयं स्नात्वा ततोऽर्भकम्। स्नापयन् भस्मगङ्गायामस्यां भक्त्या द्विजः पुनः ॥३९॥
पूर्वजन्मकृतैः पापैरसत्प्रतिग्रहोद्भवैः। विमुक्तोऽसौ क्षणाद्विप्रस्तप्तहेम यथाऽनलात् ॥४०॥
स्वर्णधारा नदी पुण्या शक्रदीप्तिस्तथा वरा। भस्माख्या सङ्गमे तासां लिङ्गतीर्थमुदाहृतम् ॥४१॥
आदायाशु मृतं पुत्रं विप्रोऽसौ ह्यगमत्पुनः। नवधारामहीतीर्थे सस्नौ ह्यस्मादधः पुनः ॥४२॥
सोऽस्नापयन्मृतं पुत्रं सङ्कल्प्य विधिवद् द्विजः। अजीजिवत्तदा तीर्थे सुप्तोत्थितो यथासनात् ॥४३॥
रुरोद बालकस्तीव्रं स्तन्यार्थी तत्करोद्धृतः। प्रेक्ष्यात्मजं तदा विप्रो मुमोद च भृशं मुहुः ॥४४॥
आदायाशु सुतं विप्रो हर्षविस्तीर्णमानसः। प्रणनाम मुहुर्भक्त्या चैतल्लिङ्गं स्तुवन्मुदा ॥४५॥
ततः प्रभृति विप्रोऽसौ पुनर्जन्मप्रदायकम्[१०]। ततः क्वचिच्च कालान्ते चैतल्लिङ्गमपूपुजत्[११] ॥४६॥
तमपि प्रापयन् शैवं[१२] यानेन प्रमथा द्विजम्। कालान्ते कर्हिचिच्चार्य ! सविग्रहं महोत्सवैः ॥४७॥
अद्यापि सोऽभवद्विप्रो रुद्रस्याऽनुचरो वरः। एतल्लिङ्गप्रसादाद्वै तत्तीर्थस्नानतः पुनः ॥४८॥
तदादि सेवितं लिङ्गं नित्यमेव सुभक्तितः। बाणासुरादिभिर्दैत्यैः प्रोत्तुङ्गवरकाङ्क्षिभिः ॥४९॥
एतल्लिङ्गप्रसादात्ते चक्रू राज्यं भृशं चिरम्। एतत्क्षेत्रे मृषारिश्च बाणशङ्खौ विराटकः ॥५०॥
दिव्यत्रिंशत्सहस्राणि राज्यञ्चक्रुर्मुदाऽत्र ते। विध्वंस्य देवराज्यानि चाऽवलुण्ठ्य त्रिविष्टपम् ॥५१॥
द्वादश्यां मीनतीर्थे च नभसः सङ्क्रमे सिते। जन्मपापं परित्यज्य शतगोदफलं लभेत् ॥५२॥
स्नानान्मधोरमावास्याञ्चन्द्रादीप्त्यां विशेषतः। नियुतैः किल्विषैर्मुक्तः शतगोदफलं भवेत् ॥५३॥

---

त्यसपछि ती ब्राह्मणले भक्तिपूर्वक यस महालिङ्गलाई नमस्कार गरेर आफू स्नान गरी भस्मगङ्गामा लगेर बालकलाई स्नान गराए। भस्मगङ्गामा स्वयं स्नान गरी मृत बालकलाई पनि स्नान गराएपछि ती ब्राह्मण आगोमा तताएको सुन शुद्ध भएझैं असत् प्रतिग्रहको पाप र पूर्वजन्ममा गरेका पापबाट मुक्त भए। स्वर्णधारा नदी अत्यन्त पुण्यदायिनी छन्। त्यस्तै अर्की शक्रदीप्ति नाम गरेकी नदी पनि उत्तम छन्। यसै स्थलमा अर्की नदी भस्मगङ्गा रहेकी छन्। तिनीहरूको सङ्गमस्थललाई लिङ्गतीर्थ भनिएको छ ॥३९–४१॥

त्यसपछि ती ब्राह्मणले मरेको छोरालाई तुरुन्तै लिएर गए। लिङ्गतीर्थभन्दा तल रहेको नवधारा नामक महान् तीर्थमा स्नान गरे। उनले मरेको छोरालाई लगेर "बाँचोस्" भनेर सङ्कल्प गरी स्नान गराए। ओछ्यानबाट सुतेर उठेजस्तै गरी त्यो बालक तुरुन्त जीवित भयो। ब्राह्मणले हातमा लिएको त्यो बालक दूध चुस्ने चाहनाले खूबसित रोयो। आफ्नो छोरालाई देखेर ब्राह्मण बारम्बार अत्यन्त प्रसन्न भए। हर्षले अत्यन्त प्रफुल्ल चित्त भएका ती ब्राह्मणले आफ्नो छोरालाई साथमा लिएर बारम्बार यस लिङ्गको स्तुति गर्दै भक्तिपूर्वक प्रणाम गरे। त्यसै समयदेखि पुनर्जन्म पाएको अनुभव गरेर फेरि पछि कुनै समयमा आएर यस लिङ्गको उपासना गरे ॥४२–४६॥

हे विरूपाक्ष ! कुनै समयमा तिनको मृत्यु भएपछि प्रमथगणहरूले ती ब्राह्मणलाई पनि यानद्वारा शरीरैसित ठूलो उत्सवका सा शिवजीको लोकमा लगे। आज पनि ती ब्राह्मण यसै लिङ्गको अनुग्रह र त्यस तीर्थमा स्नान गरेको हुँदा भगवान् शङ्करको सेवक भएर बसेका छन् ॥४७–४८॥

त्यसै समयदेखि ठूलो ठूलो वरको कामना गर्ने इन्द्रदमन, बाणासुर आदि दैत्यहरूले पनि भक्तिपूर्वक यस लिङ्गको सधैं सेवा गर्दै आएका छन्। यसै लिङ्गको अनुग्रहबाट बाणासुर, शङ्खासुर, विराटक आदि दैत्यहरूले धेरै समयसम्म यस क्षेत्रमा राज्य गरे। त्यसपछि यिनीहरूले दिव्य तीस हजार वर्षसम्म देवताहरूको राज्य ध्वस्त पारे र स्वर्ग लुटी राज्य गरे। भाद्रसङ्क्रान्ति र शुक्ल द्वादशीका दिन जसले मीनतीर्थमा गएर स्नान गर्छ त्यसले सय गाई दान गरेको फल प्राप्त गर्दछ। वैशाखकृष्ण चन्द्रमा नलागेको अमावास्याका दिन विशेष गरी यस तीर्थमा स्नान गऱ्यो भने मानिस लाखौं लाख पापबाट मुक्त हुन्छ र सय गाई दान गरेको फल प्राप्त गर्दछ ॥५३॥

---

१०. पुनर्जन्माभिधानकः, इति न.सं.पु.पाठः। ११. चैतल्लिङ्गमसेवयत्, इति न.सं.पु.पाठः।
१२. चानयंच्छैवम्, इति न.सं.पु.पाठः।

स्वर्णनद्यां पुनः स्नानाद्दशगोदफलं भवेत्। दशम्यां सितकार्त्तिक्यां शृणु विप्र ! परस्य च ॥५४॥
कनखले च पञ्चम्यां[१३] पञ्चगोदफलं भवेत् । कार्तिकस्य च शुक्लायां विशेषेण च सर्वदा ॥५५॥
शक्रह्रदे महातीर्थे पौर्णमास्यां नभस्यके[१४] । त्रिंशत्क्रतुफलं प्राप्य सर्वपापैर्विवर्जितः ॥५६॥
उशीरबीजशैले त्वं गच्छ यक्षेश्वरो विभुः। योजनार्द्धं विदूरेऽतः कौवेर्यां दिशि तिष्ठति[१५] ॥५७॥
स्नात्वा प्रयाहि[१६] नन्दिन्यां नद्याञ्च शक्रपर्वतात्। तस्यां स्नातो दिवं याति बहुपापैर्विवर्जितः ॥५८॥
नन्दिन्याः कामधेनोश्च नन्दिमूर्त्तिरियं स्मृता। तया स्नातं पुरा तस्यां तस्मात्सा नन्दिनी स्मृता ॥५९॥
तस्यां स्नातं हुतं तीरे पितृभ्यो दत्तमादरात्[१७] । तत्सर्वमक्षयं प्रोक्तं कामं तन्मनसो लभेत् ॥६०॥
मार्गशुक्लतृतीयायां नन्दिन्यां स्नानतः[१८] सदा। उशीरबीजमूले च त्रिंशद्गोदफलं स्मृतम् ॥६१॥
नन्दिन्या विष्णुपद्याश्च स्नाति यः सङ्गमे बुधः[१९] । गोसहस्रफलं प्राप्य विष्णुलोकं व्रजेत्परम् ॥६२॥

अध्यायमेतद्धि शृणोति धीमान् भद्रं महत्त्वञ्च[२०] भराटनाम्नः।
न क्लिश्यते[२१]ऽसौ खलु पुत्रशोकैः क्रमेण कालं लभते हि सत्यम् ॥६३॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां
भस्मतीर्थचन्दनभराटेश्वरयोर्माहात्म्यं नाम एकचत्वारिंशदुत्तरशततमोऽध्यायः ॥१४१॥

---

हे ब्राह्मण विरूपाक्ष ! कार्तिकशुक्ल दशमीका दिन यस स्वर्णनदीमा स्नान गर्‍यो भने मानिसले दशवटा गाई दान गरेको भन्दा बढी फल प्राप्त गर्दछ। यही फल मार्गशीर्षमासको शुक्लदशमीमा स्नान गर्नाले पनि प्राप्त हुन्छ। विशेष गरी कार्तिकमहिनाको शुक्ल पञ्चमीका दिन कनखलमा स्नान गर्‍यो भने पाँचा गोदान गरेको फल प्राप्त हुन्छ। भाद्रमहिनाको पूर्णिमाको दिन महातीर्थ भएको यस शक्रदहमा जसले स्नान गर्छ त्यो मानिस तीस यज्ञ गरेको फल प्राप्त गरेर सम्पूर्ण पापबाट मुक्त हुन्छ ॥५४-५६॥

हे विरूपाक्ष ! यहाँबाट आधा योजन पढा उत्तर दिशामा उशीरबीज नाम गरेको पर्वत छ। त्यहाँ यक्षेश्वर भगवान् बस्नुहुन्छ, अब तिमी त्यसै ठाउँमा जाऊ। त्यहाँ शक्रपर्वतबाट उत्पन्न भएकी नन्दिनी नाम गरेकी नदीमा गएर स्नान गर। त्यहाँ स्नान गरियो भने धेरै पापबाट मुक्त भएर स्वर्गमा जान पाइन्छ ॥५७-५८॥

अघि कामधेनु गाईकी पुत्री नन्दिनीले स्नान गरेको हुँदा यस नदीको नाम नन्दिनी रह्यो। नन्दिनीतीर्थमा स्नान, यज्ञ र श्रद्धापूर्वक पितृहरूलाई तर्पण, पिण्ड प्रदान गर्दा गरिएका सबै कर्म अविनाशी हुन्छन्। त्यस नदीमा नुहाउने व्यक्तिले त्यो सबै अक्षयफल पाउँछ र मनले चिताएको कामना पूर्ण हुन्छ। मार्गशुक्ल तृतीयाका दिन उशीर वृक्षको मूलमा रहेकी नन्दिनी नदीमा जसले स्नान गर्छ त्यसले तीसवटा गाई दान गरेको फल पाउँछ। नन्दिनी र विष्णुपदी नदीको सङ्गममा जुन विद्वान्ले स्नान गर्छ त्यसले हजार गाई दान गरेको फल प्राप्त गरी उत्तम विष्णुलोक पाउँछ। जुन बुद्धिमान् मानिसले भराटेश्वर भगवान् शङ्करको कल्याणदायक माहात्म्यले परिपूर्ण भएको यो अध्याय सुन्छ, त्यसले पुत्रशोकको पीडा भोग्नुपर्दैन र पूर्ण आयु पाउँछ, यो साँचो कुरा हो ॥५९-६३॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा भस्मतीर्थ र चन्दनभराटेश्वरलिङ्गको माहात्म्यनामक
एकसय एकचालिसौं अध्याय पूरा भयो।

---

१३. पञ्चम्यां कनखले प्रोक्तम्, इति न.सं.पु.पाठः।
१४. पूर्णिमायां नभस्यतः, इति न.सं.पु.पाठः।
१५. यत्र च, इति न.सं.पु.पाठः।
१६. गच्छसि, इति न.सं.पु.पाठः।
१७. दत्तमाद्रितः, इति न.सं.पु.पाठः।
१८. स्नायते, इति न.सं.पु.पाठः।
१९. नन्दिन्या विष्णुपद्या यः स्नायते सङ्गमे बुधः, इति न.सं.पु.पाठः।
२०. माहात्म्यभद्रञ्च, इति न.सं.पु.पाठः।
२१. न कर्षतेऽसौ, इति न.सं.पु.पाठः।

# द्विचत्वारिंशदुत्तरशततमोऽध्यायः

## यक्षतीर्थ-यक्षेश्वरशिवलिङ्गयोर्माहात्म्यम्

स्कन्द उवाच

भूयोऽगमद्विरूपाक्षो योजनार्द्धे घटोद्भव। कौवेर्य्यां दिशि चैतस्मादुशीरबीजपर्वतम् ॥१॥
नन्दिन्याञ्च सुखं स्नात्वा तीर्थेषु क्रमशो मुने। यक्षतीर्थे पुनःस्नात्वा यक्षेश्वरमपूजयत् ॥२॥
तदधो विष्णुकन्दर्य्याः भक्तिभावेन कुम्भज। एकादश्यां मधोः कृष्णे तस्यां तमार्च्चयन्निशि ॥३॥
मुनिं पप्रच्छ माहात्म्यं तल्लिङ्गस्य विरूपदृक्। भक्त्योदितं समाकर्ण्य विरूपाक्षवचस्तदा ॥४॥
व्याजहार मुनिस्तस्मै तन्माहात्म्यं महानिशि।

नेमुनिरुवाच

विष्णुना स्थापितं लिङ्गमेतत्पुरा विरूपदृक् ॥५॥
क्षेत्रे पाशुपते पुण्ये तप्तञ्चात्र कठोरकम्। न मुञ्चति ततो विष्णुरेतल्लिङ्गमहर्निशम् ॥६॥
एकांशेन महादेवं सेवमानः सदा मुदा[1]। कश्चिद्यक्षो हयग्रीवः कुबेरद्वारपालकः ॥७॥
द्वारिस्थो यौवनोन्मत्तो लोकान्नागणयत्पुरा। तद्भयात्किङ्करा गेहे प्रवेष्टुं यक्षभूपतेः[2] ॥८॥
द्वारं विलङ्घ्य शेकुर्न तद्दण्डतर्ज्जनाद् भृशम्। कुबेरोऽपि च तज्ज्ञात्वा तेन द्वारि निवारितः[3] ॥९॥
वर्गश्च किङ्कराणां स तञ्च न्यषेधयत्पुनः।

कुबेर उवाच

भो भो दुष्ट हयग्रीव लोको निवारितः[4] कथम् ॥१०॥
अद्यप्रभृति मे राज्ये न स्थातव्यं त्वयाऽधुना।

---

## अध्याय - १४२

### यक्षतीर्थ र यक्षेश्वर शिवलिङ्गको महिमा

कुमार स्वामीले भन्नुभयो - हे अगस्त्य मुनि ! त्यसपछि विरूपाक्ष आधा योजन उत्तरतर्फ रहेको उशीरबीज नाम गरेको पर्वतमा गए। विरूपाक्षले नन्दिनी नदीमा आनन्दसित स्नान गरे। फेरि क्रमशः तीर्थहरूमा स्नान गर्दै यक्षतीर्थमा स्नान गरेर उनले यक्षेश्वर भगवान्‌को पूजा गरे। हे अगस्त्य मुनि ! त्यसपछि विरूपाक्षले भक्तिभावले युक्त भएर वैशाखकृष्ण एकादशीका दिन राति विष्णुकन्दरीको पूजा गरे र नेमुनिसित त्यस लिङ्गको माहात्म्य सोधे। भक्तिपूर्वक भनेको विरूपाक्षको बोली सुनेर नेमुनिले राति त्यस लिङ्गको माहात्म्य विरूपाक्षलाई बताए ॥१-४॥

नेमुनिले भन्नुभयो - हे विरूपाक्ष ! अघि यस लिङ्गलाई विष्णुले स्थापना गर्नुभएको थियो। पशुपतिको पुण्यमय क्षेत्रमा यस लिङ्गको स्थापना गरी भगवान् विष्णुले यहाँ कठोर तपस्या पनि गर्नुभएको थियो। त्यसैले गर्दा त्यसै समयदेखि भगवान् विष्णुको एक अंशले रातिदन यस लिङ्गलाई छोडेको छैन, आफ्नो एक अंश लिएर भगवान् विष्णु महादेवको सधैँ सेवा गर्नुहुन्छ। अघि हयग्रीव नाम गरेको कुबेरको द्वारपाल यक्ष थियो। द्वारपाल हुन पाएँ भन्ने घमण्डले गर्दा त्यसले कसैलाई पनि गणना गरेन। त्यसको डरले गर्दा त्यसको लट्ठीले हिर्काइ खानुपर्ला भनेर कुबेरका अनुचरहरू कोही पनि भवनभित्र पस्न सक्दैनथे ॥८॥ कुबेरले पनि त्यस द्वारपालले आफ्ना अनुचरहरूलाई यहैँबाट हटाएको कुरा थाहा पाएर त्यसलाई आफ्नो ढोकाबाट हटाइदिए ॥५-९½॥

कुबेरले भने- हे दुष्ट हयग्रीव ! तैँले किन मेरा अनुचरहरूलाई ढोकाबाट भित्र पस्न दिइनस् ? आजदेखि तैँले मेरो राज्यमा वास पाउनेछैनस् ॥१०॥

---

१. सेवयन्सततं मुदा, इति न.सं.पु.पाठः।
२. कुबेरस्य प्रवेशितुम्, इति न.सं.पु.पाठः।
३. निषेधितम्, इति न.सं.पु.पाठः।

नेमुनिरुवाच

इत्युक्त्वा यज्ञराट् तञ्चाऽप्रेषयत्[५] पार्श्वगैर्द्रुतम् ॥११॥
बहिश्चकार तत्कालमलकायाः स कोपतः[६]। ततो दैवाद्धयग्रीवो भ्रमन्नत्राययौ पुरा ॥१२॥
अस्मिन्तीर्थे मुदा स्नात्वा चैतल्लिङ्गं ह्यपूजयत्[७]। प्रतिपदादि माघेषु चोष्णोदकैः समर्चितम् ॥१३॥
अनेन लिङ्गमेतद् हि[८] यावद्द्वादशवासरम्। फलमूलाशनेनैव पूजितः स सदाशिवः[९] ॥१४॥
फलैर्मूलैः प्रसूनैश्च भक्त्या गीतैर्जलोत्तमैः। ततो द्वादशवर्षान्ते काले प्राप्ते महानिशि ॥१५॥
माघकृष्णचतुर्दश्यां हयग्रीवो मृतस्तदा। निराहारो महारोगी शिवशिवेति चाऽवदत् ॥१६॥
कराभ्यामस्पृशल्लिङ्गं[१०] प्राणे कण्ठगतेऽपि च। ततो निन्युर्हयग्रीवं प्रमथाः शिवपत्तनम् ॥१७॥
अद्यापि च गणश्रेष्ठो हयग्रीवोऽभवत्पुनः।
पुनर्गच्छ द्विजाऽस्मात्त्वं यत्रास्ते चण्डिकेश्वरः ॥१८॥
पिण्डारकेण तीर्थेन मृगेन्द्राद्रिनितम्बके। स्नाहि चोशीरतीर्थे त्वं दशगोदानजं फलम् ॥१९॥
लब्ध्वाशु प्रतिमां विष्णोः प्रपश्य व्रज तत्र च। स्नात्वा पश्यति यो विष्णुं सर्वपापैः प्रमुच्यते ॥२०॥
मधोः सिते हरितिथौ शतगोदानजं फलम्।
यक्षस्य तीर्थे च यदस्ति पुण्यं प्राप्नोति सद्यः श्रवणात्कथायाः।
आद्यो भवेत्स प्रसभञ्च शीघ्रं यक्षो यथा शत्रुषु वै बलिष्ठः ॥२१॥

इति श्रीस्कन्दपराणे हिमवत्खण्डे नेपालमाहात्म्येविरूपाक्षतीर्थयात्रायां यक्षतीर्थयक्षेश्वरयोर्माहात्म्यं नाम द्विचत्वारिंशदुत्तरशततमोऽध्यायः ॥१४२॥

---

नेमुनिले भन्नुभयो – यति भनेर त्यस हयग्रीवलाई तुरुन्त पार्श्ववर्तीद्वारा बाहिर पठाउन लगाए। तिनीहरूले पनि त्यस हयग्रीवलाई कुबेरको राज्यबाट निकालिदिए। त्यहाँ दैवसंयोगले त्यो हयग्रीव घुम्दै यसै लिङ्ग भएको ठाउँमा आयो। यस तीर्थमा प्रसन्न हुँदै स्नान गरेर त्यसले यस लिङ्गको पूजा गऱ्यो। माघमहिनाको प्रतिपदादेखि लिएर उसले तातो जलले पूजा गऱ्यो। उसले भक्तिपूर्वक बाह्र दिनसम्म आफूलाई शिवलिङ्गमय बनायो। फल तथा कन्दमूल खाएर दिनदिनै शिवजीको पूजा गऱ्यो। गीत एवं वाद्यका साथ फल, कन्दमूल र पवित्र जल भक्तिपूर्वक उसले पूजा गऱ्यो। बाह्र वर्षपछि माघकृष्ण चतुर्दशीका दिन राति काल आएको हुँदा हयग्रीव भोकै रुग्ण भएर शिव! शिव! भन्दै मऱ्यो। उसले घाँटीसम्म प्राण पुगुञ्जेल हातले शिवलिङ्गलाई स्पर्श गरिरह्यो। अनि प्रमथगणहरूले हयग्रीवलाई शिवजीको लोकमा लगे। आज पनि त्यो हयग्रीव गणको मालिक भएर रहेको छ ॥११–१७½॥

हे विरूपाक्ष ! अब तिमी जहाँ चण्डिकेश्वर भगवान् हुनुहुन्छ, त्यस ठाउँमा जाऊ। मृगेन्द्रपर्वतको फेदीमा अवस्थित पिण्डारक तीर्थसँगैको उशीरतीर्थमा स्नान गर। त्यसो गऱ्यौ भने दशवटा गाई दान गरेको फल पाउनेछौ। जसले वैशाखशुक्ल एकादशीका दिन त्यस तीर्थमा स्नान गरेर विष्णुको दर्शन गर्छ त्यो सम्पूर्ण पापबाट मुक्त हुन्छ। सय गोदान गरेको फल पाउँछ। यक्षतीर्थमा जे जति पुण्य छ, यो कथा सुन्यो भने तुरुन्त त्यति नै पुण्य पाउँछ, त्यो व्यक्ति अवश्य नै चाँडै धनी हुन्छ। शत्रुको बीचमा यक्ष जति बलिया छन्, त्यो पनि त्यत्तिकै बलियो हुन्छ अर्थात् त्यसलाई शत्रुले केही गर्न सक्दैन ॥१८–२१॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा यक्षतीर्थ र यक्षेश्वरलिङ्गको माहात्म्यनामक एकसय बयालिसौं अध्याय पूरा भयो।

---

४. निषेधितः, इति न.सं.पु.पाठः।
५. तं कुबेरोऽसौ प्रेषयत्, इति न.सं.पु.पाठः।
६. तद्गणं धारयन्हस्तैस्लकाया निकाशयत्, इति न.सं.पु.पाठः।
७. समर्चितः, इति न.सं.पु.पाठः।
८. एतल्लिङ्गमयं भक्त्या, इति न.सं.पु.पाठः।
९. फलमूलाशनो नित्यमर्चति स्म सदाशिवम्, इति न.सं.पु.पाठः।
१०. कराभ्यां स्पर्शयल्लिङ्गम्, इति न.सं.पु.पाठः।

# त्रिचत्वारिंशदुत्तरशततमोऽध्यायः

## पिण्डारकतीर्थ-चण्डिकेश्वरशिवलिङ्गयोर्माहात्म्यम्

### स्कन्द उवाच

भूयोऽगमद्विरूपाक्षो यत्रास्ते चण्डिकेश्वरः। उत्तरे क्रोशमात्रे च तीर्थे पिण्डारकाभिधे[1] ॥१॥
मधोः कृष्णत्रयोदश्यां सस्नौ भक्त्या द्विजः पुनः। पिण्डारके महातीर्थे सङ्कल्प्य विधिवत्तदा ॥२॥
चतुर्दश्यामुपोष्यार्य भक्त्या पुष्पोपहारकैः। लिङ्गं सम्पूज्य माहात्म्यं तमपृच्छन्मुनिं तदा ॥३॥
व्याजहार मुनिश्रेष्ठो विरूपाक्षाय साम्प्रतम्। भक्त्योदितं समाकर्ण्य माहात्म्यञ्च तयोर्निशि ॥४॥

### ऋषिरुवाच

हत्वा च चण्डिका दैत्यान्सह मातृगणैः पुरा। तस्थौ चात्र चिरं कालं चिन्तयन्ती सदाशिवम्[2] ॥५॥
ईषे शुक्लचतुर्दश्यामेतल्लिङ्गसमुद्भवम्। प्रेक्ष्य देवी महालिङ्गमपूपुजन्मुदार्चनैः ॥६॥
चण्डिकेशो ह्यतः ख्यातो लिङ्गेशोऽयं सुरासुरैः। शृणु वच्म्यस्य माहात्म्यं कश्चिन्मुक्तो सुरः पुरा ॥७॥
आसीदेकेक्षणान्धश्च दानवेन्द्रो महाबलः। कश्यपस्यात्मजः पूर्वमत्र तेपे महातपः ॥८॥
अस्माल्लब्धवरो दैत्यश्चाऽवध्यः सर्वजन्मिनाम्। मेनिरे सर्वदैत्यास्तं हिरण्यकशिपुं यथा ॥९॥
लुण्ठति स्मासुरो नित्यं सद्योऽमरावतीं द्विज। विमथ्य चाऽमरान्द्रव्यमादायेहाययौ पुनः ॥१०॥
ततो देवाश्च सम्भूय पुरोधाय विधिं तदा। तद्बलोन्मर्दनक्षीणा म्लानमुखा इहाययुः ॥११॥
देवा निवेदयन्ति स्म तद्वृत्तान्तञ्च शूलिने। अन्धकेनाऽर्दिताः स्वर्गे सनिःश्वासा विलुण्ठिताः[3] ॥१२॥

---

### अध्याय - १४३

### पिण्डारकतीर्थ र चण्डिकेश्वर शिवलिङ्गको माहात्म्य

कुमार स्वामीले भन्नुभयो – त्यसपछि फेरि विरूपाक्ष त्यहाँबाट एक कोस उत्तरमा रहेको पिण्डारक तीर्थ नजिकै गए। त्यहाँ भगवान् चण्डिकेश्वर बस्नुहुन्थ्यो। वैशाखकृष्ण त्रयोदशीका दिन विरूपाक्षले भक्तिपूर्वक पिण्डारक नामक महातीर्थमा सङ्कल्प गरेर विधिवत् स्नान गरे। हे अगस्त्य मुनि ! चतुर्दशीका दिन उपवास बसेर चन्दन, अक्षता आदि पूजासामग्रीले भक्तिपूर्वक लिङ्गको पूजा गरिसकेपछि विरूपाक्षले नेमुनिसित चण्डिकेश्वर लिङ्गको माहात्म्य सोधे। मुनिश्रेष्ठ नेमुनिले पनि भक्तिपूर्वक सोधेको सुनेर विरूपाक्षलाई राति ती दुबैको माहात्म्य बताउनुभयो ॥१-४॥

नेमुनिले भन्नुभयो – हे विरूपाक्ष ! अघि मातृकाले सहित भएकी भगवती चण्डिका दैत्यहरूको संहार गरेर महारुद्रको ध्यान गर्दै धेरै समयसम्म यसै स्थानमा बस्नुभएको थियो। आश्विनशुक्ल चतुर्दशीका दिन यस लिङ्गको उत्पत्ति भएको देखेर भगवती चण्डिकाले पूजासामग्री ल्याई सहर्ष यस लिङ्गको पूजा गर्नुभएको थियो। त्यसैले गर्दा यस शिवलिङ्गको नाम चण्डिकेश्वर भनेर देवता र दैत्यहरूले प्रसिद्ध गराए। यहाँ अघि कुनै देवता मुक्त भएका थिए। त्यो माहात्म्य बताउँछु, सुन ॥५-७॥

उहिले कुनै आँखो अन्धो भएको कश्यपको छोरो महाबली एक दैत्य थियो। उसले यहाँ ठूलो तपस्या गर्‍यो। यसै लिङ्गबाट वर प्राप्त गरेर त्यो अन्धकनामको दैत्य सम्पूर्ण प्राणीहरूद्वारा नमर्ने भयो। सबै दैत्यहरूले उसलाई हिरण्यकशिपुजस्तै माने। त्यस राक्षसले देवताहरूको अमरावती पुरी तुरुन्त गएर लुट्यो। त्यहाँको सम्पूर्ण सम्पत्तिलिएर त्यो यहाँ आयो। त्यसपछि सारा देवताहरू जम्मा भएर ब्रह्माजीलाई अगाडि लगाई दैत्यका फौजले मर्दन गरेको हुँदा क्षीण भएर अँध्यारो मुख लगाउँदै यहाँ आए। अन्धक नामक दैत्यले सताइएका देवताहरूले यहाँ आएर भगवान् शङ्करलाई स्वर्ग लुट्ने त्यस दैत्यको वृत्तान्त लामो सास लिँदै निवेदन गरे ॥८-१२॥

---

१. पिण्डारकाऽन्तिके, इति न.सं.पु.पाठः। २. महारुद्रं सुचिन्तयम्, इति न.सं.पु.पाठः।
३. प्रलुण्ठञ्च सनिःश्वसन्, इति न.सं.पु.पाठः।

स तस्मिन् समये चाऽन्धः स्वर्गादिहाययौ द्रुतम्। अत्र स्थितान् सुरान् प्रेक्ष्य चकार रोषमद्भुतम्[४] ॥१३॥
ववर्ष शरवर्षाणि देवानामुपरि ध्रुवम्। अन्धकश्च महादैत्यो रुषाविष्टो महासुरः ॥१४॥
ववृषु देवतास्तीव्रं शरासारान् समन्ततः। अन्धस्योपरि शश्वच्च स्वर्णपुङ्खान्पतत्त्रिणः ॥१५॥
अन्धीभूता दिशश्चात्र बाणजालैः समन्ततः। महासारैर्यथाकल्पे नाबुध्यच्च दिशोन्धकः ॥१६॥
विश्वकर्मा ततो व्योम्नश्चोत्पत्य तं ववर्ष च। शिलासानुद्रुमान् पूर्णान् सजलकरकान् भृशम् ॥१७॥
इन्द्रश्चिक्षेप वज्रञ्च वह्निरग्निकणं यमः। दण्डं रक्षो दृषत्पाशं प्रचेता वायुरोजसम् ॥१८॥
पाशुपतं कुबेरश्च शूलमीशान एव च[५]। शस्त्रास्त्राणि सुराः शीघ्रं तस्योपरि च चिक्षिपुः ॥१९॥
महाकोलाहलश्चाऽभूद् गजानां ह्रेषितैस्तदा। अश्वानां रथनेमीनां शस्त्रास्त्रवर्षणैस्तथा ॥२०॥
ततोऽन्धकश्च तत्पीडां सोढ्वा चैव[६] त्वरान्वितः। एतल्लिङ्गं प्रणम्याशु तद्वरं प्रार्थयन्नभूत् ॥२१॥
भूयोऽन्धको[७] रुषाविष्टो चाग्नेयास्त्रं समन्ततः। चिक्षेप ज्वालमालाञ्च व्योम्नि देवगणोपरि ॥२२॥
इन्द्रं व्यलोडयद् भूमौ शरेणैकेन सोऽन्धकः। दिक्पालाश्च तथैवार्य पृथक् पृथक् शरेण च ॥२३॥
ब्रह्मास्त्रेणाऽन्धको बद्ध्वा विश्वकर्माणमाशु च। नागपाशेन सक्रोधं हन्तुं प्रचक्रमे तदा ॥२४॥
देवाश्चालोक्य तच्चेष्टां दिशश्च भेजिरे भयात्। त्राहि त्राहि महारुद्र ! ब्रुवन्तो हि[८] समन्ततः ॥२५॥
अशरीरोऽब्रवीदत्र प्रमथेभ्यस्तदा विभुः। दैत्यपराक्रमं प्रेक्ष्य चाऽतिहर्षितवान् प्रभुः ॥२६॥
भो प्रमथा इमं दैत्यं यानेन सह सादरम्। आनयत हि मे लोके यावन्न ताडितश्च तैः ॥२७॥

---

त्यो अन्धक दैत्य पनि त्यसै बखतमा देवताहरूलाई त्यहाँ बसेको देखेर क्रुद्ध हुँदै दौडिएर स्वर्गबाट यहाँ आयो। रीसले भुतुक्क भएको अन्धक नामक त्यस महादैत्यले देवताहरूमाथि बाणहरूको वर्षा गऱ्यो। देवताहरूले पनि अन्धक दैत्यमाथि चारैतिरबाट सुवर्णमय प्वाँख भएका बाणहरूको तीव्र वृष्टि गरे। महाप्रलयमा भएको मुसलधारे वर्षाले जस्तै गरी चारैतिरबाट वर्सिएका बाणले सबै दिशा अँध्यारा भए। अन्धक दैत्यले दिशा पत्ता लगाउन सकेन। त्यसपछि विश्वकर्मा आकाशमा उफ्रिए। ठूला–ठूला ढुङ्गा, रुख, पानी र असिनाहरू त्यस दैत्यमाथि खूबसित बर्साए ॥१३–१७॥

इन्द्रले वज्र, अग्निले आगाका फिलिङ्गाहरू, यमराजले दण्ड, निर्ऋतिले ढुङ्गा, वरुणले पासो र वायुले वेगको वर्षा गरे। कुबेरले पाशुपत अस्त्र फ्याँके, भगवान् शङ्करले त्रिशूल फ्याँक्नुभो, अरु देवताहरूले त्यस अन्धक दैत्यमाथि छिट्ये छिट्ये गरेर शस्त्र र अस्त्र फ्याँके। त्यस लडाईंमा बाणले घायल भएका हात्ती र घोडाको शब्द, रथका पाङ्गाको शब्द र अस्त्र तथा शस्त्रको सङ्घर्षणबाट पैदा भएको आवाजले ठूलो कोलाहल मच्चियो ॥१८–२०॥

त्यसपछि अन्धकासुर दैत्यले ती सबै पीडा सहन गरेर नम्र हुँदै चण्डिकेश्वर शिवलिङ्गको दर्शन गऱ्यो र आफ्नो इच्छाअनुसारको वर माग्यो। रिसाहा त्यस अन्धकासुर दैत्यले देवताका फौजहरूमाथि चारैतिर ज्वाला फैलिएको आग्नेयास्त्रको प्रहार गऱ्यो। त्यस अन्धकासुरले इन्द्रलाई एक बाण हानेर जमिनमा पछारिदियो, त्यसरी नै अरु दिक्पालहरूलाई बेग्लाबेग्लै एक–एक बाण हानेर जमिनमा ढाल्यो। रीसले चूर भएको अन्धक दैत्यले नागपाशले बाँधेर ब्रह्मास्त्र हानी विश्वकर्मालाई मार्न खोज्यो ॥२१–२४॥

विश्वकर्मालाई दैत्यले मार्न लागेको देखेर देवताहरू हे महारुद्र ! रक्षा गर्नुहोस्, रक्षा गर्नुहोस् भन्दै डराएर चारै दिशातिर लागे। त्यसै बखत महादेवले दैत्यको पराक्रम देखेर प्रसन्न हुँदै प्रमथगणलाई आकाशवाणीबाट भन्नुभयो। हे प्रमथगणहरू हो ! देवताहरूले बाण हान्नुभन्दा पहिले नै यस अन्धकासुर दैत्यलाई सम्मानका साथ विमानमा राखेर मेरो लोकमा लिएर आओ ॥२५–२७॥

---

४. इहाययौ रुषाद्भूतम्, इति न.सं.पु.पाठः।
५. ईशानः शूलमेव च, इति न.सं.पु.पाठः।
६. तदा सह्य, इति न.सं.पु.पाठः।
७. ततोऽन्धकः, इति न.सं.पु.पाठः।
८. एवं ब्रुवन, इति न.सं.पु.पाठः।

इत्यादेशं समाकर्ण्य चाऽत्राययुर्गणा द्रुतम्। यानेन कुसुमासारं वर्षयन्तो मुदाऽन्विताः ॥२८॥
तमास्थाय च निन्युस्ते शिवलोकं गणा द्रुतम्। समक्षे देवसैन्यानां साधु साध्विति वादिनः ॥२९॥
पिण्डारकस्य माहात्म्यं शृणु विरूपदृक् पुनः। द्वारवत्या इहागत्य मुक्तः कश्चिन्नृपः पुरा ॥३१॥
आसीत्कश्चिन्नृपः पूर्वं सुनीतिर्नाम विश्रुतः। मारुताधिपतिर्द्रष्टुं द्वारवत्यां ययौ हरिम् ॥३२॥
स्नात्वा तीर्थे हरिं प्रेक्ष्य चाग्रहीत्तत्प्रसूनकम्। एकेन पाणिना भूयो द्वारि प्रसार्य वै स्थितः ॥३३॥
समाययौ यमोऽप्याशु पथि याते नृपे तथा। अब्रवीदीदृशं वाक्यं सक्रोधं पतये नृणाम् ॥३४॥

यम उवाच

राजन् जानीहि माञ्च त्वं यमनाम्ना च[९] विश्रुतम्। नियामकञ्च लोकानां त्वां शासितुमिहागतम् ॥३५॥
गृहीतं भवता पुष्पमेकेन पाणिना हरेः[१०]। तद्दूषणादहं राजन् ते करं छेदयाम्यतः ॥३६॥

ऋषिरुवाच

इत्युक्त्वा त्वरितं कालश्चकर्त्त नृपतेः करम्। दक्षं गृहीतपुष्पञ्च[११] लोकानां शमनाय च ॥३७॥
दुःखदग्धो नृपोऽत्यन्तं विरक्तः पथि सिद्धराट्। न चाऽद्राक्षीत्स्वकं राज्यं शोकसन्तप्तमानसः[१२] ॥३८॥
भ्रान्त्वा च[१३] सर्वतीर्थानि पृथिव्यां काशीमाप्तवान्। तस्यास्तीर्थेषु संसस्नौ गङ्गादिषु च भक्तितः ॥३९॥

---

यस्तो आदेश सुनेर प्रमथगणहरू दगुर्दै त्यहाँ आए। विमानबाट प्रसन्न हुँदै पुष्पवृष्टि गरे। त्यसलाई गणहरूले यानमा राखेर धन्यवाद दिँदै देवताका सेनाहरूको अगाडि नै तुरुन्त शिवलोक लगे। त्यसपछि खुसी हुँदै देवताहरू स्वर्गतिर लागे। त्यो दैत्य पनि गणको नाइके भई सधैं शिवको सेवक भएर बस्न थाल्यो। अब म फेरि पिण्डारकको माहात्म्य बताउँछु। अघि द्वारवतीबाट आएर कुनै राजा यहाँ मुक्त भएका थिए, त्यो कुरा सुन ॥२८-३१॥

हे विरूपाक्ष ! अघि सुनीति नाम भएका मारुतदेशका कुनै राजा द्वारकामा भगवान् विष्णुको दर्शन गर्न भनेर गएका थिए। तीर्थमा स्नान गरेर भगवान् विष्णुको दर्शन गरिसकेपछि एउटा हातले भगवान्को प्रसाद फूल लिए अनि ढोकामा बसेर अर्को हात फैलाए। राजा आफ्नो बाटो लागेका मात्र थिए, झट्ट यमराज त्यहाँ आइपुगे र रिसाउँदै ती राजालाई भन्न लागे ॥३२-३४॥

यमराजले भने - हे राजन् ! सारा संसारलाई नियममा राख्ने यमराज नामले प्रसिद्ध व्यक्ति मै हुँ भनेर बुझ, म तिमीलाई दण्ड दिन यहाँ आएको हुँ। भगवान् श्रीकृष्णको प्रसाद फूल तिमीले एउटा हातले समात्यौ, त्यसै अपराधले गर्दा म तिम्रो हात काट्छु ॥३५-३६॥

नेमुनिले भन्नुभयो - यति भनेर सारा संसारलाई नियममा राख्नका लागि यमराजले तुरुन्त फूल समात्ने राजाको दाहिने हात काटे। हे विरूपाक्ष ! बाटमा हात काटिएको हुँदा पीरले विरक्त भएका ती राजाले आफ्नो राज्यको कुनै वास्ता गरेनन्। पृथ्वीका सम्पूर्ण तीर्थहरू भ्रमण गरेर उनी काशीमा आइपुगे। काशीका गङ्गा आदि सारा तीर्थमा उनले भक्तिपूर्वक स्नान गरे ॥३७-३९॥

---

९. नाम्ना यमञ्च, इति न.सं.पु.पाठः।
१०. गृहीतं भवता पुष्पं हरेश्चैकेन पाणिना, इति न.सं.पु.पाठः।
११. दक्षगृहीतपुष्पञ्च, इति न.सं.पु.पाठः।
१२. स सुनिर्वृत्तमानसः इति न.सं.पु.पाठः।
१३. बाभ्रम्य, इति न.सं.पु.पाठः।

पाशुपतस्य माहात्म्यं सोऽशृणोद्वृषिवक्त्रतः । कौशिकीगण्डकीष्वार्य ! स्नात्वाऽत्र प्राप्तवान्नृपः ॥४०॥
प्रेक्ष्य पाशुपतं क्षेत्रं मुमुदे[१४] खलु निर्जनः । वाग्वत्यादिषु संस्नाय चाऽत्रैव प्राप्तवान् पुनः ॥४१॥
मत्पाणिश्च यथापूर्वं परत्राऽपि भवत्विति । एवं सङ्कल्प्य भूपोऽसौ सस्नौ सर्वत्र चाऽत्र च ॥४२॥
मधोः कृष्णत्रयोदश्यां सङ्क्रान्त्या संयुजि नृपः । सस्नौ चाऽत्र मुदा भक्त्या निमज्ज्योन्मज्य वै मुहुः ॥४३॥
जलादुत्तीर्य भूपोऽसौ चाऽपश्यत्स्वकरं तदा । तत्र प्रादुर्भूताः शाखाः स्वल्पाङ्कुराश्च तत्क्षणात् ॥४४॥
प्रसन्नश्च[१५] भृशं विप्र ! मासैकं व्याप्य भूपतिः । स्नात्वा तस्थौ मुदा चाऽत्र महातीर्थे विरूपदृक् ॥४५॥
माससमात्रेण तत्पाणिः पूर्णरूपभवत्तदा[१६] । पूर्वस्य द्विगुणं शुभ्रं तं प्रेक्ष्य हर्षितो भृशम् ॥४६॥
ततो जगाम राज्यं स्वमतिप्रहर्षितो नृपः । राज्यञ्चकार निष्पापो धर्मेण सुचिरं भृशम् ॥४७॥
भूयो गच्छ विरूपाक्ष ! चाऽतः पूर्वदिशि ध्रुवम् । धर्मेश्वरो हि यत्रास्ते धर्मेण सह सन्ततम् ॥४८॥

पिण्डारकस्यार्य ! शृणोति वीरस्तीर्थस्य लिङ्गस्य च यो महत्त्वम्[१७] ।
स्नानाद्यदस्त्याशु फलं स तद्वै प्राप्नोति निष्पापतनुश्च तत्र ॥४९॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां
पिण्डारकतीर्थचण्डिकेश्वरयोर्माहात्म्यं नाम त्रिचत्वारिंशदुत्तरशततमोऽध्यायः ॥१४३॥

---

पशुपतिनाथको पवित्र तीर्थ देखेर उनी अत्यन्त प्रसनन भए। वाग्वती आदि नदीमा स्नान गरेर फेरि एक्लै उनी यहाँ आइपुगे। मेरो हात पहिलेकै जस्तो पछि पनि बनोस् यस्तो सङ्कल्प गरेर ती राजाले अरू सबै तीर्थका साथै यस तीर्थमा स्नान गरे। सङ्क्रान्तिले युक्त भएको चैत्रकृष्ण त्रयोदशीका दिन प्रसन्न भएर डुब्दै निस्कदै गरी यस तीर्थमा ती राजाले भक्तिपूर्वक स्नान गरे। जलबाट निस्किएपछि ती राजाले आफ्नो हात हेरे। आफ्ना हातमा उनले अङ्कुरजस्ता औंलाहरू धमाधम निस्कँदै गरेको देखे ॥४१–४४॥

हे विरूपाक्ष ! त्यो देखेर राजा अत्यन्त प्रसन्न भए। एक महिनासम्म त्यसै महातीर्थमा स्नान गरेर उनी बसे ॥ एक महिनाभित्र उनको हात पूर्ण भयो, पहिलेको भन्दा दोब्बर राम्रो भयो। त्यो हात देखेर उनी साह्रै खुसी भए। त्यसपछि पापमुक्त भई राजा प्रसन्न भएर आफ्नो राज्यमा गए। त्यहाँ उनले धेरै समयसम्म धर्मपूर्वक राजकाज चलाए ॥४६–४७॥

हे विरूपाक्ष ! अब तिमी यहाँबाट पूर्वतिर जाऊ। त्यहाँ धर्मका साथमा धर्मेश्वर भगवान् सधैं विराजमान हुनुहुन्छ। हे विरूपाक्ष ! जुन मानिसले पिण्डारक तीर्थ र चण्डिकेश्वर महादेवको माहात्म्य सुन्दछ, त्यसले पिण्डारकमा स्नान गरेर चण्डिकेश्वर भगवान्को दर्शन गरेको फल पाउँछ र ऊ सारा पापबाट मुक्तशरीरको शुद्ध बन्दछ ॥४८–४९॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा पिण्डारकतीर्थ र चण्डिकेश्वरलिङ्गको माहात्म्यनामक
एकसय त्रिचालिसौं अध्याय पूरा भयो।

---

१४. मुमोद, इति न.सं.पु.पाठः।
१५. प्रहर्षिता, इति न.सं.पु.पाठः।
१६. सम्पूर्णमभवत्तदा, इति न.सं.पु.पाठः।
१७. माहात्म्यम्, इति न.सं.पु.पाठः।

# चतुश्चत्वारिंशदुत्तरशततमोऽध्यायः

## धर्मेश्वरशिवलिङ्गमाहात्म्यम्

### स्कन्द उवाच

भूयोऽगमद्विरूपाक्षो मुनिना सह तेन च। धर्मेश्वरो हि यत्रास्ते धर्मतीर्थतटोत्तमे ॥१॥
बलाकातीर्थमाश्रित्य धर्मो यत्र व्यवस्थितः। वकाश्रम इति ख्यातः पापैस्तत्र न लिप्यते ॥२॥
ज्येष्ठिला च नदी श्रेष्ठा धर्मगङ्गा सरिद्वरा। तयोश्च सङ्गमे पुण्ये धर्मतीर्थमुदाहृतम् ॥३॥
अत ऊर्ध्वप्रदेशे च कटके पर्वतस्य तु। तीर्थं ब्रह्मविलं गत्वा ब्रह्मा च वरदोऽभवत् ॥४॥
दर्व्यां सरलकीर्णायां मृगशृङ्गस्य भूभृतः। बलाकारूपमाश्रित्य धर्मो यत्र विराजते ॥५॥
बलाकारूपमासाद्य ब्राह्मणं यस्तु भोजयेत्। नरकेषु निमग्नान् स पितृन् सन्तारयेन्नरः ॥६॥
संस्नाति सततं यस्तु पार्श्वे पापप्रणाशने। प्रभावाद्धर्मराजस्य नरकं स न पश्यति ॥७॥
बलाकोदकसम्भेदे विष्णुपद्या जले शुभे। स्नानात् काममवाप्नोति पिता तस्य प्रतुष्यति ॥८॥
मधोः कृष्णचतुर्दश्यां कुशहस्तो विधानतः। तेषु स्नात्वा विरूपाक्षो धर्मेश्वरमपूपुजत् ॥९॥
तदपृच्छच्च माहात्म्यं प्रणम्यर्षिं निशान्तरे। आकर्ण्य तद्वचो रात्रौ विरूपाक्षस्य कुम्भज ॥१०॥
व्याजहार शुभं वाक्यं तस्मै च मुनिसत्तमः।

### ऋषिरुवाच

धर्मेण स्थापितं लिङ्गञ्चैतत्पूर्वयुगे द्विज ॥११॥
बलाकारूपमासाद्य चैनं नित्यं प्रसेवते। ज्ञात्वा पाशुपतं क्षेत्रमध्यासीदत्र सन्ततम् ॥१२॥
एतल्लिङ्गं समास्थाय बलाकारूपतो निशम्। एतल्लिङ्गे पुरा मुक्तः कश्चित्पापी किरातकः ॥१३॥

---

## अध्याय - १४४

### धर्मेश्वर शिवलिङ्गको माहात्म्य

कुमार स्वामीले भन्नुभयो- त्यसपछि फेरि विरूपाक्ष नेमुनिलाई साथमा लिएर धर्मतीर्थको उत्तम तटमा जानुभयो। त्यहाँ धर्मेश्वर भगवान् बस्नुभएको थियो। जुन ठाउँमा बकुल्लाको रूप लिएर धर्म बस्नुभएको छ, जसको नाम बकाश्रम भनी प्रसिद्ध भएको छ, त्यस ठाउँमा पापीहरू प्रवेश गर्न सक्दैनन्। ज्येष्ठिला नाम गरेकी नदी र धर्मगङ्गा नाम गरेकी उत्कृष्ट नदी त्यहाँ बगेकी छन्। ती दुईको पवित्र सङ्गमलाई धर्मतीर्थ भनिएको छ। त्यसदेखि माथि पहाडको टकुरामा ब्रह्मविल नाम गरेको तीर्थ छ। त्यस तीर्थमा गएर स्नान गरेको हुँदा ब्रह्मा वर दिनका लागि समर्थ हुनुभयो ॥१-४॥

सल्लाले ढाकिएको मृगस्थली पर्वतको ओढारमा बकुल्लाको रूप लिएर धर्म रहनुभएको छ। बलाकारूप तीर्थमा गएर जुन मानिसले ब्राह्मणलाई भोजन गराउँछ, त्यसले नरकमा डुबेका पितृहरूलाई तार्दछ। जुन मानिस सारा पापलाई नाश गर्ने बलाकातीर्थमा गएर स्नान गर्दछ, धर्मराजका प्रभावले त्यसले नरक देख्नुपर्दैन। बलाकातीर्थको जलबाट निस्किएकी विष्णुपदीको पवित्र तीर्थमा स्नान गर्नाले मनले चिताएको सम्पूर्ण कामना पूर्ण हुन्छ, त्यसका पिता अत्यन्त प्रसन्न हुन्छन्। चैत्रकृष्ण चतुर्दशीका दिन हातमा कुश लिएर विधिपूर्वक ती तीर्थहरूमा स्नान गरी विरूपाक्षले धर्मेश्वर भगवान्को पूजा गरे। हे अगस्त्य मुनि ! नमस्कार गरेर कुनै रातमा विरूपाक्षले नेमुनिलाई त्यस तीर्थको माहात्म्य सोधे। नेमुनिले पनि विरूपाक्षको त्यो वचन सुनेर तिनलाई कल्याणकारी वचन भन्नुभयो ॥५-१०½॥

नेमुनिले भन्नुभयो - हे विरूपाक्ष ! अघिल्लो युगमा धर्मराजले यस लिङ्गको स्थापना गरेका थिए। उनले बकुल्लाको रूप लिएर सधैं यस लिङ्गको आराधना गरे। यो पशुपतिको क्षेत्र हो भन्ने ठानेर बकुल्लारूपधारी ती यमराज सधैं यहाँ बस्थे। यसै लिङ्गको आराधनाबाट अघि कुनै पापी किरात मुक्त भएको थियो ॥११-१३॥

तद्वृत्तान्तं प्रवक्ष्यामि शृणु भक्त ! विरूपदृक्। आसीत्कश्चित् किरातश्च बकास्यो नाम विश्रुतः ॥१४॥
अत्र महानगर्यां स चाऽवात्सील्लब्धवृत्तिकः। नित्यं स प्राणिनो हत्वा भुनक्ति स्म स्वयं सुखम् ॥१५॥
पापाचारः सदा म्लेच्छो निष्ठुरः प्राणिनां भृशम्। हत्वा च निर्दयो जीवान् बुभुजे च स्वयं सुखम् ॥१६॥
कुक्षिम्भरो रुषाऽविष्टो बालवृद्धसमेक्षणः। ज्येष्ठकृष्णचतुर्दश्यां धर्मतीर्थजलं पपौ ॥१७॥
हत्वा शङ्कुं बकास्योऽसौ घर्मपीडातृषार्दितः। तज्जलस्पर्शपुण्यात्स स्तोकज्ञानैः परिप्लुतः ॥१८॥
पूजयन्तं शिवं स्नात्वा वशिष्ठञ्च ददर्श सः। भुक्तवानपि तत्तीर्थं सस्नौ तत्र पुनर्द्विज ॥१९॥
पत्रपुटजलैर्भक्त्या चैतल्लिङ्गमपूपुजत्। लिङ्गार्चितं वशिष्ठेन वकास्यश्चाऽत्र तन्निशि ॥२०॥
बिल्वपत्राणि चादाय भक्त्या तल्लिङ्गमार्चयत्[1]। वकास्यस्तदमावास्यां पञ्चत्वं प्राप्तवान्तदा ॥२१॥
उषसि मृगयाखेदात्कालप्राप्तो विनिद्रकः। अध्यक्षे तं वसिष्ठस्य निन्युः शिवपुरं गणाः ॥२२॥
धर्मेश्वरप्रभावात्स शङ्करानुचरोऽभवत्। संस्नाति धर्मतीर्थं यः सर्वपापैर्विमुच्यते ॥२३॥
भक्त्याच्र्चयति धर्मेशं धर्मलोकं स गच्छति। तां जलशायिनीं मूर्तिं विष्णोः पश्य कृते युगे[2] ॥२४॥
संहृत्य सकलाँल्लोकानेकः शेते पुरा विभुः। तत्र स्नात्वार्चितो येन चाऽनन्तोऽयं हि भक्तितः ॥२५॥
इहलोकं परित्यज्य विष्णुलोकं स गच्छति।

---

हे भक्त विरूपाक्ष ! म त्यो वृत्तान्त बताउँछु, सुन– अघि बकास्य नाम गरेको कुनै किरात थियो। यस ठूलो नगरीमा व्याधाको वृत्ति लिएर त्यो किरात बस्दथ्यो। ऊ सधैँ आफैँ प्राणीहरूलाई मारेर सुखपूर्वक भोजन गर्दथ्यो। अपराधी आचरण भएको निठुरी त्यस म्लेच्छले निर्दय भई प्राणीहरूको आफैँ हत्या गरेर सुखपूर्वक भोजन गर्दथ्यो। ऊ आफ्नो पेट भर्नुबाहेक अरू कुनै काम गर्दैनथ्यो, अत्यन्त रिसाहा थियो। बालक र बूढाबूढीलाई एकै दृष्टिले हेर्थ्यो। ॥१३–१६॥

हाँस अथवा माछा मारेर थाकेको तथा घामका कारण तिर्खाले आत्तिएको त्यस बकास्यले कुनै ज्येष्ठकृष्ण चतुर्दशीका दिन यसै धर्मतीर्थको पानी पियो। त्यसै धर्मतीर्थका जलको स्पर्शजन्य पुण्यका प्रभावले त्यसमा केही ज्ञान पलायो। उसले शिवजीको पूजा गर्न लागेका वसिष्ठलाई देख्यो। हे विरूपाक्ष ! धर्मतीर्थको जल पान गरेपछि त्यसले फेरि त्यस तीर्थमा स्नान गऱ्यो। त्यसै दिन राति पातको भाडामा पानी ल्याएर वसिष्ठले पूजा गरेको यस लिङ्गलाई यसले पनि पूजा गऱ्यो। बेलका पात ल्याएर भक्तिपूर्वक बकास्यले त्यस लिङ्गको पूजा गऱ्यो। त्यसै अमावास्याका दिन त्यसै ठाउँमा त्यो बकास्य मऱ्यो ॥१७–२१॥

औँसीको दिन बिहान शिकार खेलेर थाकेको त्यो बकास्य महानिद्रामा डुब्यो। वसिष्ठको अगाडि नै शिवजीका गणहरूले त्यसलाई शिवलोकमा लगे। धर्मेश्वरको प्रभावले गर्दा ऊ शिवजीको सेवक बन्यो। जसले धर्मतीर्थमा स्नान गर्छ त्यो व्यक्ति सम्पूर्ण पापबाट मुक्त हुन्छ। जसले भक्तिपूर्वक धर्मेश्वर, जलशायी भगवान् विष्णुको पूजा गर्दछ त्यो मानिस धर्मलोकमा प्राप्त हुन्छ। सत्ययुगमा सम्पूर्ण प्राणीहरूलाई संहार गरेर एक्लै जलमा शयन गर्नुहुने भगवान् विष्णुको यो त्यही जलशायी मूर्ति हो। जसले धर्मतीर्थमा स्नान गरेर भक्तिपूर्वक जलशायी विष्णुको पूजा गर्छ मरेपछि त्यो मानिस विष्णुलोकमा जान्छ। त्यहाँ जसले स्नान गरेर भक्तिपूर्वक भगवान् अनन्तको पूजा गर्दछ त्यो व्यक्ति अनन्तकै रूपमा परिणत हुन्छ ॥२४–२५½॥

---

१ अपृच्छत्तञ्च माहात्म्यं तत्, इति न.सं.पु.पाठः।

२. विष्णोमूर्तिञ्च पश्यार्य जलशायीं कृते युगे, इति न.सं.पु.पाठः।

अतो गच्छ विरूपाक्ष योजनार्द्धं विदूरकम् ॥२६॥
गोकर्णेशो हि यत्रास्ते चन्द्रभागातटे शुभे ।
अध्यायमेतद्धि शृणोति धीमान् धर्मस्य तीर्थस्य वरं महत्त्वम्[३] ।
लिङ्गस्य स्वप्नोद्भवजैश्च पापैः त्यक्तो ह्यसौ गच्छति धर्मलोकम् ॥२७॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां धर्मेश्वरमाहात्म्यं नाम चतुश्चत्वारिंशदुत्तरशततमोऽध्यायः ॥१४४॥

---

यसकारण हे विरूपाक्ष ! तिमी यहाँबाट आधा योजन टाढा रहेको चन्द्रभागा नदीको कल्याणदायी तीरमा जाऊ। त्यहाँ गोकर्णेश्वर भगवान् बस्नुभएको छ ॥२६½॥

जुन मानिसले धर्म, तीर्थ र धर्मेश्वरको पवित्र माहात्म्य भएको यो अध्याय सुन्छ, त्यो व्यक्ति जाग्रत्‌, तथा स्वप्न अवस्थामा भए/गरेका पापबाट मुक्त भएर धर्मलोकमा जान्छ ॥२७॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा धर्मेश्वरतीर्थको माहात्म्यनामक एकसय चौवालिसौं अध्याय पूरा भयो ।

---

३. माहात्म्यम्, इति न.सं.पु.पाठः ।

# पञ्चचत्वारिंशदुत्तरशततमोऽध्यायः

## पितामहतीर्थगोकर्णेश्वरशिवलिङ्गयोर्माहात्म्यम्

स्कन्द उवाच

भूयोऽगमद्विरूपाक्षो मुनिना सह कुम्भज । गोकर्णेशो हि यत्रास्ते चन्द्रभागातटोत्तमे ॥१॥
चन्द्रेणैव तपस्तप्तं मुञ्जवच्छेखरे पुरा । सहस्राब्दं शिवं ध्यात्वा तस्माल्लब्धवरो द्विजः[1] ॥२॥
तदासनात्समुद्भूता नदी चन्द्रसमोज्ज्वला । अश्वमेधफलं प्राप्य तस्यां स्नातो दिवं व्रजेत् ॥३॥
चन्द्रभागा नदी पुण्या वाग्वती च महानदी । तयोस्तु सङ्गमे तीर्थं पैतामहञ्च विश्रुतम् ॥४॥
दशगयासमं ज्ञेयं तद्भूमिस्पर्शमात्रतः । पिण्डदानाच्छतगुणं तत्र चेद्विधिवद्यथा ॥५॥
चैत्रकृष्णस्य सिद्धोऽसौ चाऽमावास्यां घटोद्भव । पितामहादितीर्थेषु सस्नौ भक्त्या यथाविधि ॥६॥
आनर्च विधिवल्लिङ्गं पैतामहं विरूपदृक् । पप्रच्छ निशि माहात्म्यं तल्लिङ्गतीर्थयोर्मुनिम् ॥७॥
आकर्ण्य तद्वचो रात्रौ सिद्धर्षिः कुम्भज ! ध्रुवम् । व्याजहार ततस्तस्मै तन्माहात्म्यं महत्तरम् ॥८॥

सिद्धर्षिरुवाच

ब्रह्मणा स्थापितं पूर्वमेतल्लिङ्गञ्च हारिणम् । गोकर्णाख्यं महालिङ्गं भक्तानाञ्च वरप्रदम् ॥९॥
प्रसेवितं पुलस्त्येन विश्रवसा तथानिशम् । ब्रह्मणा चैव जानीहि सिद्धैश्चैव सहस्रकैः ॥१०॥
तस्माल्लब्धवरो रक्षो रावणो लोकरावणः । येनैव क्षोभितो लोको सर्वं जानीहि सिद्धिभाक् ॥११॥
तीर्थानाञ्चाऽत्र माहात्म्यं वक्ष्यामि शृणु तेऽधुना । गोकर्णे राजितानाञ्च लिङ्गानाञ्च विशेषतः ॥१२॥

---

## अध्याय - १४५

### पितामहतीर्थ र गोकर्णेश्वर शिवलिङ्गको माहात्म्य

कार्तिक स्वामीले भन्नुभयो– हे अगस्त्य मुनि ! त्यसपछि विरूपाक्ष नेमुनिलाई साथमा लिएर जहाँ गोकर्णेश्वर भगवान् रहनुभएको थियो, त्यसै चन्द्रभागा नदीको उत्तम तटमा गए । अघि मुञ्जवान् पर्वतको डाँडामा बसेर हजार वर्षसम्म चन्द्रमाले शिवजीको ध्यान गरी तपस्या गरेका थिए, त्यसै तपस्याको प्रभावले गर्दा वर प्राप्त गरी चन्द्रमा द्विजराज भए । चन्द्रमा बसेको ठाउँबाट चन्द्रमाजस्तै उज्यालो चन्द्रभागा नदी पैदा भएकी छन् । त्यहाँ स्नान गर्‍यो भने अश्वमेध यज्ञको फल प्राप्त गरी मानिस स्वर्ग जान पाउँछ । चन्द्रभागा नाम गरेकी नदी पवित्र छन् । त्यस्तै वाग्वती नाम गरेकी अर्की ठूली नदी छन् । ती दुईको सङ्गमलाई पैतामह तीर्थ भनिन्छ । त्यहाँको भूमिमात्र स्पर्श गर्‍यो भने पनि दशपटक गया गएको फल प्राप्त हुन्छ। त्यहाँ विधिपूर्वक पिण्ड दिइयो भने त्यसभन्दा सय गुणा बढी फल पाइन्छ॥१-५॥

हे अगस्त्य मुनि ! सिद्ध विरूपाक्षले चैत्रकृष्ण अमावास्याका दिन पैतामह आदि तीर्थमा गएर सभक्ति विधिपूर्वक स्नान गरे । विरूपाक्षले विधिपूर्वक पैतामह लिङ्गको पूजा गरे । राति उनले नेमुनिसित त्यस लिङ्ग र तीर्थको माहात्म्य सोधे । हे अगस्त्य मुनि ! विरूपाक्षको त्यो प्रश्न सुनेर सिद्धऋषि भएको नेमुनिले त्यस तीर्थ र लिङ्गको उत्तम माहात्म्य उनलाई बताए ॥६-८॥

सिद्धऋषि नेमुनिले भने – यो गोकर्ण नाम गरेको भक्तको कामना पूर्ण गर्ने सुन्दर महालिङ्ग अघि ब्रह्माजीले स्थापना गर्नुभएको हो । पुलस्त्यले यस लिङ्गको निरन्तर आराधना गरे । त्यस्तै विश्रवाले आराधना गरे । ब्रह्माजीले पनि यसको उपासना गर्नुभयो । यहाँ आएर हजारौं सिद्धहरूले पनि यसको अराधना गरे भन्ने कुरा तिमी बुझ । हे सिद्ध विरूपाक्ष ! त्यसै लिङ्गको आराधनाबाट वर प्राप्त गरेर संसारलाई रुवाउने रावण नाम गरेको राक्षसले सम्पूर्ण संसारलाई क्षुब्ध तुल्याएको थियो भन्ने कुरा बुझ । यस गोकर्णक्षेत्रमा विद्यमान सबै तीर्थ र विशेष गरी यस लिङ्गको माहात्म्य अब तिमीलाई म बताउँछु, सुन ॥९-१२॥

---

१. सहस्राब्दं शिवे तस्माल्लब्धवरो द्विजेश्वरः, इति न.सं.पु.पाठः ।

आसीत्कश्चित्पुरा वैश्यो वेश्यापुत्रो विरक्तधीः । लोकविडम्बकोऽजस्रं जारजो निःसृतः पुरात् ॥१३॥
कुण्डलीनगरेऽवात्सीद्दन्तुरो नाम विश्रुतः । अज्ञातपितृको वैश्यो मातुरभावतोऽपि च ॥१४॥
सखिभिः पृच्छ्यमानोऽसौ बाल्यान्ते[2] स्वसमैरिति । कस्य पुत्रः सखेऽसि त्वं वद नाम पितुस्तव ॥१५॥
एवं तैः पृच्छ्यमानोऽसौ दातुं प्रत्युत्तरं द्विज । असमर्थो ह्यभूत्तस्मात् पुरादेष[3] विनिर्गतः ॥१६॥
गङ्गातीरं समासाद्य ददर्श पुलहञ्च सः । मुनिना चेति संदृष्टः क्व भवान् क्वागतो वद ॥१७॥

दन्तुर उवाच

न जाने मातरं तातं तयोर्नाम्नोरभावतः । मयि बाले मृता माता पिता चैव मुनीश्वर ॥१८॥
सखिभिः सर्वलोकैश्च नित्यमहं विडम्बितः । कस्य पुत्रोऽसि हे बालस्ते पितुर्नाम भो वद ॥१९॥
एवं तैः पृच्छ्यमानोऽहं दुःखातुर इहागतः । नोत्सहे जीवितुं तात क्षणमपि शपे त्वयि ॥२०॥
कस्य पुत्रो ह्यहं तात सर्वज्ञोऽसि न संशयः । भवान् वदतु मे नो चेत्त्यक्ष्याम्यहमसून्ध्रुवम् ॥२१॥

पुलह उवाच

हिमाद्रिगह्वरे पुण्ये नेपालनाम्नि शाङ्करे । चन्द्रभागातटे गच्छ गोकर्णेशो हि यत्र च ॥२२॥
तदुत्तरगयातीर्थे शतगयाफलप्रदे । पितामहमहाक्षेत्रं सर्वक्षेत्रोत्तमोत्तम् ॥२३॥
ब्रह्मविष्णुहरैरेतद् वाग्वत्या चन्द्रभागया । पवित्रितं महाक्षेत्रं पितृणाञ्चैव तारकम् ॥२४॥
तत्र पिण्डप्रदानाच्च त्रिसप्त प्रोद्धरेत्कुलम् । तत्र पिण्डप्रदानात्ते पिण्डं पिता ग्रसिष्यति ॥२५॥

---

अघि सधैँ दुनियाबाट घृणित भएर विरक्त भएको कुनै जारबाट उत्पन्न वेश्यापुत्र वैश्य थियो । ऊ विरक्त भएर शहरबाट निस्कियो । त्यो वैश्य कुण्डली नगरमा बस्दथ्यो । दाँत उछिट्टिएको हुँदा त्यसलाई दन्तुर भन्थे । उसका बाबुको ठेगान थिएन र त्यसकी आमा पनि थिइन । बाल्यावस्था पूरा भइसकेपछि आफूसमानका साथीहरूले उसलाई तँ कसको छोरो होस् ? तेरो बाबुको नाम के हो ? भन भनेर सोधे । यसरी उनीहरूले सोधेको प्रश्नको उत्तर त्यसले दिन सकेन । त्यसै कारणले गर्दा त्यो शहरबाट निस्किएको थियो । गङ्गाको तीरमा पुगेपछि उसले पुलह ऋषिलाई देख्यो । ऋषिले पनि उसलाई देखे र भने– तिमी को हौ ? कहाँबाट आयौ ? भन ॥१३–१७॥

दन्तुरले भन्यो– हे मुनीश्वर ! आमा र बाबुका बारेमा मलाई थाहा छैन । त्यसो हुनाले उहाँहरूको नाम पनि म जान्दिनँ । म बालक छँदै आमा र बुबा दुवै मर्नुभयो । साथी र अरू मानिसले पनि मलाई हेला गरे । हे बालक ! तँ कसको छोरो होस् ? तेरो बाबुको नाम के हो ? भनेर उनीहरूले मलाई सोधे । यसरी उनीहरूले सोधेपछि अत्यन्त दुःखित भएर म यहाँ आएको छु । हे मुनि ! एकछिन पनि मलाई बाँच्ने इच्छा छैन, हजुरसित किरिया खाएर भन्छु । हे मुनि ! हजुर सर्वज्ञ हुनुहुन्छ, यसमा शङ्का छैन । म कसको छोरो हुँ ? मलाई बताउनुहोस्, होइन भने म यसै ठाउँमा अवश्य प्राण छोड्नेछु ॥१८–२१॥

पुलहले भने– तिमी यहाँबाट हिमालयको काखमा अवस्थित शिवजीको प्रिय नेपाल नाम गरेको देशमा चन्द्रभागा नदीको तट छ, त्यसै तटमा गोकर्णेश्वर महादेव रहनुभएको छ, त्यहाँ जाऊ । सय गयाको फल दिने उत्तरगयामा सबै क्षेत्रमा उत्तम मानिने पितामह महाक्षेत्र छ, ब्रह्मा, विष्णु र शिवजी र वाग्वती एवं चन्द्रभागा नदीले पवित्र तुल्याएका छन् । यस महाक्षेत्रलाई पितृतारक तीर्थ नै मानिएको छ । त्यहाँ पिण्ड दियो भने एक्काइस कुलको उद्धार हुन्छ । त्यहाँ तिमीले पिण्ड दियौ भने तिम्रा पितृहरूले त्यो पिण्ड खान पाउँछन् ॥२२–२५॥

---

२. प्रोढान्ते, इति न.सं.पु.पाठः । ३. भावादद्य, इति न.सं.पु.पाठः ।

नेमुनिरुवाच

इत्यादेशं समाकर्ण्य पुलहस्य च दन्तुरः[४] । अत्रैव प्राप्तवान्विप्र ! चैकाकी निर्जने वने ॥२६॥
भाद्रासितचतुर्दश्यां स्नात्वा विश्रवसा सह। गोकर्णेशं प्रणम्याशु तस्थौ तीर्थे ह्युपोषितः ॥२७॥
अमावास्यां ततो वैश्यः सङ्कल्पं कृतवाँस्तटे। मुनिमुखाद्धि दर्भाग्रैः सस्नौ च विधिवन्मुहुः ॥२८॥
तदुत्तरगयातीर्थे गदाधराभिधानके। भक्त्या ततो हि स स्नात्वा पिण्डं दातुं प्रचक्रमे ॥२९॥
यथा गोत्राय ते तात ! यथानाम्ने च ते स्वधा[५] । एष पिण्डो मया दत्त इत्युच्चार्य ददौ हि सः[६] ॥३०॥
आगत्य पितरश्चात्र प्रसेरुर्युगपत्करान्। ग्रहीतुञ्चैव तत्पिण्डं भित्त्वाशु बालुवेदिकाम् ॥३१॥
देहि देह्यत्र मे पुत्र ! पिण्डं त्वत्करसंश्रितम्। तर्पय मे मुखे तोयं येन तृप्यामि सन्ततम् ॥३२॥
तिलोदकैरब्दमेकं तृप्तोऽस्मिँश्च पुरे वसे। केवलेनाम्भसा पुत्र तृप्तिः षण्मासमादरात् ॥३३॥
पिण्डदानेन चाऽत्राऽहं शतवर्षं महासुखम्। दत्त्वा ते चाशिषः पुत्र ! भूत्वा तृप्तो वसे सुखम् ॥३४॥
उक्तवन्तस्तदा तत्र वादञ्चक्रुर्मुहुर्हि ते। मत्पुत्र मम पुत्रेति भृशं विप्र ! पुरा पुनः ॥३५॥
ततो वैश्यश्च चित्रात्मा तस्थौ हि स्थगितस्तदा। कस्मै पिण्डः प्रदातव्य एवं चिन्ताकुलो भृशम् ॥३६॥
आश्वासयन्मुनिर्वैश्यं विश्रवाश्चाऽत्र साम्प्रतम्। कस्मैचित्त्यज मा पिण्डं संस्मरामि पितामहम् ॥३७॥
मुनिना संस्मृतः[७] शीघ्रं ब्रह्मा ह्यागत्य चाऽत्र वै। व्याचष्टे वचनं तस्मै व्योमस्थः श्रावयन् विशम् ॥३८॥

---

नेमुनिले भन्नुभयो – हे विरूपाक्ष ! पुलहको यस्तो कुरा सुनेर अधम त्यो वैश्य एक्लै मान्छे नभएको यस वनमा आयो। भाद्रकृष्ण चतुर्दशीका दिन त्यस वैश्यले विश्रवा ऋषिका साथै गोकर्णेश्वरलाई नमस्कार गऱ्यो र त्यस तीर्थमा उपवास बस्यो। मुनिको भनाइ अनुसार अमावास्याका दिन तीरमा बसेर त्यस वैश्यले सङ्कल्प गऱ्यो र कुशका टुप्पाले (पानी छर्कंदै) विधिपूर्वक बारम्बार स्नान गऱ्यो। गदाधर नाम गरेको त्यस महान् उत्तरगया तीर्थमा उसले स्नान गरेर पिण्ड दिन प्रारम्भ गऱ्यो ॥२६–२९॥

नाम र गोत्रको उच्चारण गर्दै हे पिता ! यो पिण्ड हजुरलाई दिन्छु भनेर स्वधावाचन गरी उसले बाबुलाई पिण्ड दियो। त्यस अवसरमा त्यहाँ एकैचोटि पितृहरू आए र बालुवाको वेदीलाई भत्काई त्यो पिण्ड ग्रहण गर्नका लागि हात फैलाए। हे छोरा ! तिम्रो हातमा रहेको पिण्ड मलाई देऊ। मेरो मुखमा जल राख, म सधैँ यसबाट तृप्त हुन्छु। हे पुत्र ! तिल–जलको तर्पणले एक वर्ष तृप्त भएर यस शहरमा बस्दछु, खाली जलको तर्पणले छ महिनासम्म तृप्ति प्राप्त गरी आनन्दपूर्वक बस्नेछु। पिण्डदानले म सय वर्षसम्म महासुखी हुन्छु। हे छोरा ! म तिमीलाई आशीर्वाद दिन्छु र तृप्त भएर सुखपूर्वक बस्दछु ॥३०–३४॥

त्यहाँ जम्मा भएका पितृहरू 'अघि यो मेरो छोरो थियो, यो मेरो छोरो थियो' भनेर परस्परमा विवाद गर्न थाले। त्यसपछि त्यो वैश्य छक्क पऱ्यो र रोकियो। अब कसलाई पिण्ड दिने भनेर ऊ अत्यन्त चिन्तित भयो। ऋषि विश्रवाले त्यस वैश्यलाई 'आत्तिने काम नगर, कसैलाई पनि पिण्ड नदेऊ, म पितामहलाई सम्झन्छु' भनी उसलाई आश्वस्त तुल्याए। मुनिले पितामहलाई सम्झिसकेपछि आकाशबाटै वैश्यलाई सुनाउँदै ब्रह्माजीले आएर मुनिलाई भन्न लाग्नुभयो ॥३५–३८॥

---

४. विशाधमः, इति न.सं.पु.पाठः।
५. यथा नाम यथागोत्र एष पिण्डः पितर्हि ते, इति न.सं.पु.पाठः।
६. स्वधेति प्रसभं कृत्वा पित्रे पिण्डं ददौ हि सः, इति न.सं.पु.पाठः।
७. संस्मारिते मुनौ, इति न.सं.पु.पाठः।

ब्रह्मोवाच

मा मा ददासि पिण्डं त्वं वारुणीस्थाय विड्वर। विप्राय चैव खिङ्गाय प्राचीस्थाय विशेषतः ॥३९॥
विशानेन पुरा वैश्य ! त्वन्माता च विवाहिता। गर्भे धत्ते न तद्वीर्यं त्वन्माताऽसौ ततो मृतः ॥४०॥
मृते वैश्ये ततो विप्रः विटरूपेण[८] नीतवान्। त्वन्माता च न धत्ते सा तस्य तेजस्तथापि च ॥४१॥
तस्मादपि च त्वन्माता नीतानेन विशा रहः। खिङ्गगरूपेण नित्यं सा विप्रं विलङ्घ्य तद्भयात् ॥४२॥
तद्वीर्येण हि वैश्य त्वमुत्पन्नोऽसि न संशयः। विप्रेण प्रोषितायां त्वं तस्मादपि च तत्सुतः ॥४३॥
पित्रे पिण्डञ्च निःशङ्कं मध्यस्थायाशु दीयताम्। यस्य वीर्यात्समुद्भूतस्तस्मै वैश्याय वैश्य वै ॥४४॥
विशेषेणैव मत्तीर्थे पिण्डदानात्कदापि च। नागमिष्यति तत्राऽन्यः पितैव हि न संशयः ॥४५॥

ऋषिरुवाच

इत्याज्ञाञ्च समाकर्ण्य वैश्यः पितामहस्य च। ददौ पिण्डं स्वपित्रे वै हित्वा चैवाऽपरं द्विज ॥४६॥
पैतामहे महातीर्थे ददौ पिण्डं पुनर्हि सः। सङ्कल्प्य विधिवद् भक्त्या तिलोदककुशैः समम् ॥४७॥
अग्रहीत्तत्पिता वैश्यः सप्तभिः पितृभिः समम्। तिलोदकानि तत्पिण्डं जहर्षुः[९] पितरश्च ते ॥४८॥
ततश्च पितरस्तस्मै चाशिषः प्रददुर्भृशम्। तृप्तास्तिलोदकैः पिण्डैर्गगनस्था मुदान्विताः ॥४९॥
समूचुः पितरस्तस्मै वचांसि त्वरितं मुदा। विश्वेदेवैश्च सम्भूय तीर्थादुत्तीर्य वै समम् ॥५०॥

---

ब्रह्माजीले भन्नुभयो– हे वैश्य ! पश्चिमपट्टि रहेकालाई पिण्ड नदेऊ, विशेष गरेर पूर्वपट्टि रहेको खिङ्ग अर्थात् गुण्डो ब्राह्मणलाई पनि पिण्ड नदेऊ। हे वैश्य ! तिम्री आमालाई यस वैश्यले विवाह गरेको हो। आमाले वैश्यको वीर्य गर्भमा धारण नगर्दै त्यो वैश्य मरेको थियो। वैश्य मरेपछि यो गुण्डो ब्राह्मणले तिम्री आमालाई लगेको थियो तैपनि तिम्री आमाले यस ब्राह्मणको वीर्य धारण गरिनन्। त्यसपछि कुनै वैश्यले गुण्डो ब्राह्मणका डरले उसलाई छलेर तिम्री आमालाई एकान्तमा लग्यो। हे वैश्य ! तर तिमी उनै वैश्यका वीर्यबाट उत्पन्न भएका हौ, यसमा शङ्का छैन। ब्राह्मणले निकालिएकी तिम्री आमाबाट तिमी पैदा भयौ। त्यसकारणले पनि तिमी खास त्यही वैश्यका छोरा ठहर्छौ। हे वैश्य ! जसको वीर्यबाट तिमी पैदा भयौ, तिनै माझमा बस्ने पितृस्वरूप वैश्यलाई शङ्का नमानीकन पिण्डदान देऊ। विशेष गरेर मेरो तीर्थमा पिण्ड दिँदा बाबुबाहेक अरू आउन पाउँदैनन्। खास बाबु नै आउँछन्, यसमा शङ्का छैन ॥३९–४५॥

ऋषिले भन्नुभयो– हे विरूपाक्ष ! ऋषि र पितामहको यस्तो वचन सुनेर त्यस वैश्यलाई अरुलाई छोडी आफ्नो बाबुलाई पिण्ड दियो। फेरि उसले पैतामह नाम गरेको महातीर्थमा तिल, जल र कुश लिएर सङ्कल्प गरी सभक्ति विधिपूर्वक पिण्डदान दियो। उसका बाबु वैश्यले आफ्ना सात पुस्तका पितृहरूलाई साथमा लिएर तिल, जल मिसिएको पिण्ड ग्रहण गरे। पितृहरू खुसी भए। त्यसपछि आकाशमा रहेका पितृहरूले तर्पण तथा पिण्डबाट तृप्त भएर प्रसन्न हुँदै वैश्यलाई आशीर्वाद दिए। पितृहरूले तीर्थबाट सहस्र उत्रिई विश्वेदेवाहरूका साथमा बसेर तुरुन्त त्यसलाई भने ॥४६–५०॥

---

८. खिङ्गरूपेण, इति न.सं.पु.पाठः।

९. मुमुदुः, इति न.सं.पु.पाठः।

पितर ऊचुः

पुत्र ! पौत्र ! प्रपौत्रार्य ! दत्तैः पिण्डोदकैस्त्वया। सुतृप्ताश्च भवामोऽद्य चाऽस्मिन्तीर्थे न संशयः ॥५१॥
अद्यप्रभृतिरार्य त्वं सार्वभौमपतिर्भव। कालान्ते च ततः पुत्र ! मनुर्भव चिरं पुनः ॥५२॥
भूयः शृणु वरं पुत्र ! मन्वन्तरे ततः पुनः। भूत्वा मुनिवरो मुक्तो लिङ्गे चास्मिन्भविष्यसि ॥५३॥
अदर्शना वयं भूयो नायाष्यामो दशाऽपराः[10]। त्वया सहैव मुक्ताश्च भविष्यामः शिवेऽत्र वै ॥५४॥
स्पर्शनादपि चैतस्यामधःस्थाः पितरोऽपि च। अस्मल्लोकं व्रजिष्यन्ति पिण्डतिलोदकैः किमु ॥५५॥
दशगयासमं ज्ञेयं क्षेत्रं पैतामहं त्विहम्। कलौ पैतामहं ज्ञेयं मोक्षदं हि गयात्रये ॥५६॥

ऋषिरुवाच

इत्यादिश्य पिता तस्य पितामहैः समं ययौ। पितृलोकं विमानेन दत्त्वा सफलमाशिषः ॥५७॥
वैश्योऽपि स्वं ययौ देशमधःस्थानपि तत्पितॄन्। रसातलात्समुद्धृत्य पिण्डतिलोर्णरज्जुभिः ॥५८॥
एतल्लिङ्गं समभ्यर्च्य भक्त्योपहारकार्चनैः। विश्रवसं प्रणम्यादौ चादायाज्ञां हि तद्ययौ ॥५९॥
सार्वभौमस्ततः सोऽभून्मध्यदेशे हि विड्वरः। सहस्राब्दं सुखं राज्यं भुक्तवान्नीतिभिः खलु ॥६०॥
राज्यं पुत्राय संन्यस्य साङ्ख्ययोगैर्विरक्तवान्। राज्याद्विनिःसृतो वैश्यो हा गोकर्णेश्वरेति च ॥६१॥
अत्र प्राप्तो[11] मृतो वैश्यो क्षेत्रे पाशुपते पुनः। तत्पुण्यादभवच्चाऽसौ स्वारोचिषो मनूत्तमः ॥६२॥
अतो मन्वन्तरे सोऽपि पुनरत्रैव चापतत्[12]। पुण्यप्रभावतः स्वर्गात्पितॄणामाशिषा द्विजः ॥६३॥

पितृहरूले भने – छोरा, नाति, पनातिका सम्बन्धले युक्त भएका हे वैश्य ! तिमीले पिण्डदान दियौ, यस तीर्थमा हामी तृप्त भयौँ, यसमा शङ्का छैन। हे बाबु ! आजदेखि तिमी पृथ्वीको चक्रवर्ती राजा होऊ। पछि गएर धेरै कालसम्म मनु हुनेछौ। हे छोरा ! फेरि अर्को वर पनि सुन – त्यसपछि मन्वन्तरमा श्रेष्ठ मुनि भएर तिमी यसै लिङ्गको आराधनाबाट मुक्त हुनेछौ। दश पुस्ता अगाडि र दश पुस्ता पछाडिका नदेखिने हामीहरू बीचमा देखिनेछौँ र तिमीसमेत एक्काइस पुस्तासम्मका सबै मानिसहरू यस शिवलिङ्गको आश्रयबाट मुक्त हुनेछौ। यस तीर्थको स्पर्शबाट मात्र पनि पातालमा रहेका पितृहरू यहाँ आउँछन् भने तर्पण पिण्ड दिएका खण्डमा त के भनिरहनुपर्छ र ? यो पैतामहक्षेत्र दशगयाको क्षेत्र बराबर छ भनेर जान। तीन गयामध्ये यो पैतामह क्षेत्र कलियुगमा विशेष मोक्षदायक मानिएको छ ॥५१–५६॥

ऋषिले भन्नुभयो – यस्तो आशीर्वाद दिएर पितामहका साथ उनका बाबु विमानबाट पितृलोक गए। ती वैश्य पनि पिण्ड, तिल र जलरूपी डोरीले रसातलबाट ती पितृहरूलाई उद्धार गरेर आफ्नो देशतिर गए। वैश्यले भक्तिपूर्वक उपहार तथा पूजासामग्रीद्वारा यस लिङ्गको पूजा गरी विश्रवामुनिलाई नमस्कार गरेर उहाँको अनुमति लिई प्रस्थान गरे। त्यहाँबाट गएपछि ती वैश्य मध्यदेशको चक्रवर्ती राजा भए। हजार वर्षसम्म आनन्दसित नीतिपूर्वक राज्यको भोग गरे। त्यसपछि तिनले राज्य छोरालाई जिम्मा लगाए। साङ्ख्यसिद्धान्तमा प्रतिपादित योगको अनुसरण गरेर ती वैश्य विरक्त भए। हे गोकर्णेश्वर ! भन्दै राज्यबाट उनी प्रस्थान गरे ॥५७–६०॥

त्यसपछि उनी यसै पाशुपतक्षेत्रमा गए र पछि त्यहीँ मरे। आफूले गरेका पुण्यका प्रभावले स्वारोचिष नाम गरेका मनु भए। त्यसपछि तिनै वैश्य अर्को मनुका पालामा आफ्नो पुण्यको प्रभाव र पितृहरूको आशीर्वादले गर्दा स्वर्गबाट फेरि पृथ्वीतल अर्थात् गोकर्णेश्वरमा आइपुगे ॥६०–६३॥

१०. भूयश्चानागताः दशापराः, इति न.सं.पु.पाठः। ११. अप्राप्तोऽत्र, इति न.सं.पु.पाठः।
१२. चात्रैव चापत्पुनः, इति न.सं.पु.पाठः।

स्नात्वा शुक्लचतुर्दश्यामत्र[१३] भाद्रपदस्य च। एतल्लिङ्गं समभ्यर्च्य भक्त्या जागृतवान्निशि ॥६४॥
तत्र सस्नौ पुनर्भक्त्या पित्रे पिण्डं ददौ पुनः। तिलोदकैश्च सङ्कल्प्य गोकर्णेशं धिया स्मरन् ॥६५॥
प्रमथास्तमिहागत्य चादध्युः पुष्पके मुदा[१४]। शैवं लोकं शिवादेशात् निनीषवो महोत्सवैः[१५] ॥६६॥
निन्युः शिवपुरं वैश्यं प्रमथास्तं महोत्सवैः। अद्यापि सोऽभवद्वैश्यो रुद्रस्यानुचरोऽनिशम् ॥६७॥
तस्मिन्नवसरे कश्चिच्चौर आगत्य चात्र च। एतस्माद्धि भृगोः शीघ्रं नत्वेशमुत्पपात च ॥६८॥
बालं मृतं समालोक्य चान्यो म्लेच्छश्च विद्रुतः। अभिद्रुत्य भयात्तस्य चोत्पपात भृगोरतः ॥६९॥
प्रमथास्तमिहागत्य चादध्युः पुष्पके मुदा[१६]। शैवं लोकं शिवादेशात् निनीषवो महोत्सवैः[१७] ॥६६॥
निन्युः शिवपुरं वैश्यं प्रमथास्तं महोत्सवैः। अद्यापि सोऽभवद्वैश्यो रुद्रस्यानुचरोऽनिशम् ॥६७॥
शिवदूता मृते तस्मिन्याने चास्थाय तं द्रुतम्। निन्युः शिवपुरं भव्यं चाप्सरोभिः प्रसेवितम्[१८] ॥७०॥
भूयो गच्छ विरूपाक्ष ! हनुतीर्थञ्च यत्र वै। कोशत्रयविदूरेऽतो दक्षिणस्यां हि सिद्धिभाक्[१९] ॥७१॥
कावेर्युदकसम्भेदे मणिमत्या जलोत्तमे। स्नाहि चाकाशगङ्गायां दशाश्वमेधजं फलम् ॥७२॥
कोषोदके पुनः स्नाहि यत्र स्नानं कृतं सुरैः। गवां दशफलं प्रोक्तं देवैस्तत्र विरूपदृक् ॥७३॥
तेषु स्नात्वा व्रजाशु त्वं यत्र कोटीश्वरो विभुः। रुद्रधारातटे लिङ्गं विराजते हि सन्ततम् ॥७४॥
शृणोति योऽध्यायमिमं सुभक्तितः प्रीणन्ति नित्यं पितरश्च तस्य वै।
विना च पिण्डैर्हि तिलोदकैस्तथा दशाब्दमात्रं खलु तत्पुरे वसन् ॥७५॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां
पैतामहतीर्थगोकर्णेश्वरयोर्माहात्म्यं नाम पञ्चचत्वारिंशदुत्तरशततमोऽध्यायः ॥१४५॥

---

भाद्र शुक्लपक्ष चतुर्दशीका दिन गोकर्णेश्वरको नजिकैबाट बगेकी वाग्वती नदीमा स्नान गरेर उनले भक्तिपूर्वक यस लिङ्गको पूजा गरे र रातभर जाग्राम बसे। फेरि त्यसै तीर्थमा स्नान गरेर उनले गोकर्णेश्वर भगवान्लाई सम्फदै तिल–जलले सङ्कल्प गरी प्रेमसित आफ्ना बाबुलाई पिण्ड दिए। शिवजीको आज्ञा अनुसार ती वैश्यलाई स्वर्गमा लैजान प्रमथगणहरू त्यहाँ आए अनि गीत गाउँदै र बाजा बजाउँदै ठूलो उत्सवका साथ तिनलाई तिनलाई पुष्पक विमानमा राखे। प्रमथगणहरूले ठूलो उत्सवका साथ ती वैश्यलाई शिवजीको लोकमा लगे। आज पनि ती वैश्य निरन्तर शिवजीको सेवक भएर बसिरहेका छन् ॥६४–६७॥

यसै बीचमा कुनै चोर गोकर्णेश्वरमा आयो। हडबडसित शिवजीलाई नमस्कार गरेर ऊ गोकर्णेश्वरको नजिकैको पर्वतको भिरबाट जान लागेको थियो। यसै अवसरमा मरेको बालक लिएर दौडिरहेको अर्को म्लेच्छलाई उसले देख्यो। त्यसलाई देखेर डरले दौडिँदा ऊ पहाडबाट खस्यो र मर्‍यो। मरेको त्यस चोरलाई तुरुन्तै शिवजीका दूतहरूले आफ्नो विमानमा राखेर अप्सराद्वारा सुसेवित तुल्याउँदै शिवपुरीमा लगे ॥६८–७०॥

हे विरूपाक्ष ! अब तिमी यहाँबाट तीन कोस टाढा दक्षिणतिर रहेको हनुमत्तीर्थमा जाऊ। कावेरी नदीको जलवेगले तीव्र रूपमा प्रवाहित बनाइएकी मणिमती नाम गरेकी नदीको सङ्गम अनि आकाशगङ्गाको उत्तम जलमा स्नान गर। त्यसो गर्‍यौ भने दशवटा अश्वमेध यज्ञ गरेबराबरको फल प्राप्त हुन्छ। जहाँ अघि देवताले स्नान गरेका थिए, त्यसै कोषोदक तीर्थमा गएर तिमीले स्नान गर्नुपर्दछ। त्यहाँ स्नान गर्‍यौ भने दशवटा गाई दान गरेको फल प्राप्त हुन्छ भन्ने कुरा देवताहरूले बताएका छन्। त्यसपछि तिमी ती ती तीर्थहरूमा स्नान गरेर जहाँ कोटेश्वर भगवान् हुनुहुन्छ त्यस ठाउँमा जाऊ। त्यहाँ रुद्रधारानदीका तटमा शिवजीको लिङ्ग सधैँ विराजमान भएको छ ॥७१–७४॥

जसले यो अध्याय भक्तिपूर्वक सुन्दछ, त्यसका पितृहरू तिलतर्पण, पिण्डादि नदिईकन पनि प्रसन्न हुन्छन्। कोटेश्वर वा काटीश्वर महादेवको नगरीमा रही यो अध्याय सुन्ने व्यक्ति दश वर्षसम्म शिवलोकमा बस्न पाउँछ ॥७५॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा पैतामतीर्थ र गोकर्णेश्वरको माहात्म्यनामक
एकसय पैंतालिसौं अध्याय पूरा भयो।

---

१३. स्नात्वा चात्र चतुर्दश्यां शुक्लायाम्, इति न.सं.पु.पाठः।
१४. शिवम्, इति न.सं.पु.पाठः।
१५. गीतवाद्यमहोल्लासैर्विनयन् तं शिवाज्ञया, इति न.सं.पु.पाठः।
१६. शिवम्, इति न.सं.पु.पाठः।
१७. गीतवाद्यमहोल्लासैर्विनयन् तं शिवाज्ञया, इति न.सं.पु.पाठः।
१८. प्रसेवयन्, इति न.सं.पु.पाठः।
१९. त्रयकोशे विदूरेऽतो दक्षिणे दिशि सिद्धिभाक्, इति न.सं.पु.पाठः।

# षट्चत्वारिंशदुत्तरशततमोऽध्यायः

## हनुमत्तीर्थमहिमा

### स्कन्द उवाच

ततोऽगमद्विरूपाक्षो हनुतीर्थे घटोद्भव। तत्र सस्नौ तृतीयायां शुक्लायां माधवस्य तु ॥१॥
अपृच्छत् तन्माहात्म्यं स तीर्थस्य नेमुनिं निशि। सोऽप्यब्रवीत्तदा तस्मै तीर्थमाहात्म्यमाशु च ॥२॥

### नेमुनिरुवाच

अञ्जनाप्रार्थितः पूर्वं वायुपुत्रः[1] कपिर्द्विज। चरन्तं गगने सूर्यं प्रेक्ष्य कौतूहलेन च ॥३॥
अधुना देहि मे मातः ! क्रीडनाय कुतूहलम्। विचरन्[2] गगने किं तत्तेजोरूपञ्च पश्यताम् ॥४॥
वचो निशम्य पुत्रस्य चाऽतिकौतूहलोदितम्। मुमुदे साञ्जनात्यन्तं किष्किन्धायां सुविस्मिता[3] ॥५॥
उवाच वचनं शीघ्रं पुत्राय साञ्जना तदा। कौतूहलेन सिद्धार्य्य क्रोडस्थाय स्मितानना ॥६॥

### अञ्जनोवाच

अगम्यं तत्कथं दास्ये ते रविं गगनेचरम्। यदि शक्नोषि हे पुत्र ! गृह्यतां व्योममण्डले[4] ॥७॥

### ऋषिरुवाच

समाकर्ण्य वचो मातुः पराह्ने सहसा तदा। तस्याः क्रोडात्कपिश्चाऽसावुत्पपात नभोऽन्तरे ॥८॥
प्रसार्याशु करं व्योम्नि गृहीत्वा तं[5] स वायुजः। तद्रथकूबरे सद्यो वायुरिव पपात च ॥९॥
तद्रथकूबराघातात्कपेर्हनुर्बिभेद च। पपाताऽत्र द्रुतं व्योम्नस्तस्य भग्नो हनुर्द्विज ॥१०॥

---

## अध्याय – १४६

### हनुमत्तीर्थको महिमा

कुमार स्वामीले भन्नुभयो– हे अगस्त्य मुनि ! त्यसपछि विरूपाक्ष हनुमत्तीर्थमा गए। उनले त्यहाँ वैशाखशुक्ल तृतीयाका दिन स्नान गरे। राति विरूपाक्षले त्यस तीर्थको माहात्म्य नेमुनिसित सोधे। नेमुनिले पनि तुरुन्त त्यस तीर्थको माहात्म्य विरूपाक्षलाई बताए ॥१–२॥

नेमुनिले भन्नुभयो– पहिले अञ्जनाको प्रार्थना अनुसार पैदा भएका वायुपुत्र हनुमान्‌ले आकाशमा हिँडिरहेका सूर्यलाई देखेर ज्यादै उत्कण्ठित हुँदै आमालाई भने– 'हे आमा ! मलाई खेल्नका लागि आकाशमा हिँडिरहेको तेजोमय देखिने त्यो डल्लो के हो ? मलाई खेल्नका लागि ल्याइदिनुहोस् न।' हे सिद्ध पुरुष ! छोराको वचन सुनेर उत्कण्ठित भएकी ती अञ्जना अत्यन्त प्रसन्न भइन् र काखमा बसेका हनुमान्‌लाई उनले मुसुक्क हाँस्दै भन्न लागिन् ॥३–६॥

अञ्जनाले भनिन्– भेट्नै नसकिने त्यो आकाशमा हिँड्ने डल्लो म तिमीलाई कसरी दिन सक्छु र ? यदि तिमी आफैँ लिन सक्छौ भने आकाशमा छ, लेऊ ॥७॥

ऋषिले भने– आमाको भनाइ सुनेर बेलुकापख हनुमान् आमाको काखबाट आकाशतिर उफ्रिए। हात फैलाएर आकाशमा हिँडिरहेका सूर्यलाई समात्न उफ्रिएका ती हनुमान्‌ले वायुले झैँ सूर्यको रथको हरिसमा ठक्कर खाए। हे विरूपाक्ष ! त्यसरी रथको हरिसमा ठोक्किँदा उनको चिउँडो भाँच्चियो। उनी आकाशबाट तुरुन्तै पृथ्वीमा पछारिए ॥८–१०॥

---

१. देहि मातोऽधुना मह्यम्, इति न.सं.पु.पाठः।
२. चरन्तम्, इति न.सं.पु.पाठः।
३. किष्किन्ध्यां चकितेक्षणा, इति न.सं.पु.पाठः।
४. पुत्र त्वं प्रगृह्यतां तमम्बरे, इति न.सं.पु.पाठः।
५. तं गृहीतुम्, इति न.सं.पु.पाठः।

तत्राकाशे कपौ सिद्ध यावच्च व्यथितः स्थितः[६]। तावत्सूर्योऽचरद् व्योम्नि योजनानां सहस्रकम् ॥११॥
सोऽपि चाऽत्र पपाताशु वायुपुत्रस्तदा पुनः। कृतस्नानेषु[७] देवेषु सिद्धेषु मुनिषु द्विजः ॥१२॥
ददर्श स ऋषीनत्र ततो नद्योः सुसङ्गमे। पूजयतो हरं स्नात्वा ध्यायतः संस्थितानपि[८] ॥१३॥
वशिष्ठात्रिमरीचींश्च पुलस्त्यं पुलहं क्रतुम्। भृगुमाङ्गिरसं चाऽन्यं दत्तात्रेयञ्च नारदम् ॥१४॥
अपृच्छन्नारदो चैनं कस्मादिहागतः कपे। किमर्थं नो वदाशु त्वं त्वद्धनूभेदितं कथम् ॥१५॥
नारदस्य वचः श्रुत्वा कपिरत्र घटोद्भव। कारणं[९] कथयामास मुनिभ्योऽत्र समागमे ॥१६॥
आकर्ण्य मुनयस्तस्य वाचमागमनं पुनः। हनोर्भङ्गं तदाश्चर्यं प्रापुर्भृशं विरूपदृक् ॥१७॥
धन्यधन्येति तस्मै ते वदन्तो नाम साम्प्रतम्। हनूमानिति ते नाम चाऽद्यतो भविता कपे ॥१८॥
यस्मात्प्रपतितश्चाऽत्र त्वद्धनुर्गगनात्पुनः। तस्मादेतद्धनूतीर्थं भूयात्कपे वरप्रदम् ॥१९॥
कपीनां प्रवरं तीर्थं तद्वाञ्छितप्रदम्। लोकानाञ्च विशेषेण स्नातकानां कपीश्वर ॥२०॥
स्नात्वाऽत्र स्थाप्यतां लिङ्गं बालुभिः शिलयाऽपि वा। दीर्घजीवी कपेऽद्यादि भविता त्वं न संशयः ॥२१॥
साधयिष्यसि त्वं सर्वान् लोकान् स्वीयान् भृशं कपे[१०]। त्रेतायुगे हि रामस्य कार्यमेतज्जलाप्लवात्[११] ॥२२॥
कृत्वा शीघ्रञ्च तत्सर्वं हनुमन् गच्छ मन्दिरम्। स्नातव्यं भवता चाऽत्र सर्वपर्वसु यत्नतः ॥२३॥

---

हे विरूपाक्ष ! जब पवनपुत्र ठक्करको पीडाले व्यथित अवस्था थिए त्यही छोटे समयमा पनि सूर्य आकाशमा हजार योजन पर पुगिसकेका थिए। वायुपुत्र हनुमान् त्यसै तीर्थमा खसे। त्यहाँ दुई नदीको सङ्गम भएको तीर्थमा स्नान गरिसकेपछि वायुपुत्रले भगवान् शिवको ध्यान गर्दै शिवजीको पूजा गरिरहेका कोही त्यसै बसिरहेका देवता, सिद्ध र मुनिहरूको दर्शन गरे। त्यहाँ विराजमान मुनिहरूमध्ये मुख्य बनेका वशिष्ठ, अत्रि, मरीचि, पुलस्त्य, पुलह, क्रतु, भृगु, अङ्गिरा, दत्तात्रेय र नारद बसेका थिए । उनले ती सबैको दर्शन गरे ॥११–१४॥

नारदले हनुमान्लाई सोधे – हे वानर ! तिमी कहाँबाट यहाँ आयौ ? किन आयौ ? कसरी तिम्रो यो चिउँडो भाँचियो ? छिट्टै भन। नारदको भनाइ सुनेर हनुमान्ले मुनिहरूसँग भेट भएको घटनासम्मको सबै वृत्तान्त बताए ॥१६॥ हनुमान्को भनाइ सुनेर उनको यस स्थलको आगमन र चिउँडो भाँचिएको वृत्तान्तले ऋषिहरू अत्यन्त आश्चर्यचकित भए ॥१५–१७॥

ऋषिहरू सबैले यहाँ हनुमान्लाई धन्यवाद दिए र उनको उचित नामको विचार गरी उनलाई भने –'हे कपीश्वर ! आजदेखि तिम्रो नाम हनुमान् रह्यो'। हे वानर ! आकाशबाट तिम्रो भाँचिएको हनू(चिउँडो) यहाँ खस्यो, त्यसैले यस तीर्थको नाम आजदेखि वरदायक हनूतीर्थ भयो। हे कपीश्वर ! यो तीर्थ उत्तम तीर्थ छ। यसले मानिसहरूलाई विशेष गरेर स्नान गर्ने व्यक्तिहरूलाई इच्छा लागेको फल दिन्छ। हे हनुमान् ! यस ठाउँमा स्नान गरी बालुवा र ढुङ्गा ल्याएर शिवजीको लिङ्ग बनाऊ। आजदेखि तिमी चिरञ्जीवी हुनेछौ, यसमा शङ्का छैन। त्यसपछि तिमीले यस तीर्थको जलमा स्नान गरेको हुँदा त्रेतायुगमा रामचन्द्रलाई सहयोग गर्न सक्नेछौ, सबै प्राणीहरूलाई तिमीले सहयोग पुऱ्याउनेछौ। हे हनुमान्! चाँडो यो सबै काम गरेर आफ्नो घर जाऊ। यस तीर्थमा तिमीले प्रयास गरेर सबै पर्वहरूमा स्नान गर्नुपर्दछ ॥१८–२३॥

---

६. व्यथिते स्थिते, इति न.सं.पु.पाठः।
७. स्नापितेषु च, इति न.सं.पु.पाठः।
८. पूजयन्तं हरं कश्चित्स्नात्वा ध्यायन्थितान् तथा, इति न.सं.पु.पाठः।
९. तत्सर्वम्, इति न.सं.पु.पाठः।
१०. ततः साधिष्यसि त्वं वै लोकान्सर्वान् भृशं कपे, इति न.सं.पु.पाठः।
११. कसमुद्रलङ्घनादित्यर्थः।

ऋषिरुवाच

ऋषीणां वचनं श्रुत्वा हनुमानत्र भक्तितः। तृतीयायां मुदा सस्नौ शुक्लायां भाद्रकस्य च ॥२४॥
संस्थाप्य विधिवल्लिङ्गं प्रेक्ष्येदञ्च शिलामयम्[१२]। किष्किन्धायां ययौ शीघ्रं[१३] हनूमान् राम किङ्करः ॥२५॥
कृत्वा रामायणं सिद्ध स्नातवानत्र[१४] पर्वसु। अद्यापि स इहागत्य परिवारैः समं सदा ॥२६॥
अत्र स्नातो दिवं याति बहुपापैर्विवर्जितः। अग्निष्टोमफलं प्राप्य भुक्त्वा भोगान्यथेप्सितान् ॥२७॥
बन्ध्या चेदबला स्नानादत्र पुत्रवती भवेत्। पतिप्रिया भवेन्नित्यं गुणरूपबलान्विता ॥२८॥
स्वल्पायुर्यो भवेन्मर्त्यः स्नानादत्र विरूपदृक्। दीर्घजीवी भवेत्सोऽपि सर्वपापैर्विवर्जितः ॥२९॥
भूयो गच्छ विरूपाक्ष ! यत्र कोटीश्वरो विभुः। धनुषां द्विसहस्राणां दूरे वायोर्दिशि ध्रुवम् ॥३०॥
अध्यायमेतच्छृणुयान्मुदा यः स्नानात्फलं प्राप्य हि सोऽत्र नूनम्।
गच्छत्यवश्यं त्रिदिवं विमुक्तः सर्वैनसा वाग्घृदयाङ्गजेन ॥३१॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां
हनुतीर्थमाहात्म्यं नाम षट्चत्वारिंशदुत्तरशततमोऽध्यायः ॥१४६॥

---

ऋषिले भन्नुभयो – ऋषिको यो भनाइ सुनेर हनुमान्ले भक्तिपूर्वक भाद्रशुक्ल तृतीयाका दिन प्रसन्न हुँदै यस तीर्थमा स्नान गरे। विधिपूर्वक ढुङ्गाले बनेको लिङ्गलाई स्थापना गरेर दर्शन गरी उत्तम प्राप्त गर्ने श्रीरामका भक्त एवं सेवक हनुमान् छिट्टैआफ्नो किष्किन्धा नगरीमा गए। हे सिद्ध विरूपाक्ष ! हनुमान् भगवान् रामको लीलामा सहयोगी भई रामायण पूरा गरेर आज पनि सपरिवार यहाँ आएर आउँछन् र नुहाउँछन् ॥२४-२६॥

यहाँ स्नान गर्ने मानिसले अग्निष्टोम यज्ञ गरेको फल पाउँछ, सम्पूर्ण पापबाट मुक्त भएर इच्छा लागेको भोग उपभोग गरी ऊ स्वर्ग जान्छ। बाँझी आइमाई छ भने पनि उसले यहाँ स्नान गर्दा पुत्रवती हुन्छे, पतिकी प्यारी हुन्छे, सधैँ गुण, रूप र शक्तिले युक्त बन्दछे। हे विरूपाक्ष ! जसको थोरै आयु छ, त्यसले यस तीर्थमा स्नान गऱ्यो भने सम्पूर्ण पापबाट मुक्त भएर त्यो व्यक्ति चिरञ्जीवी हुन्छ ॥२७-२९॥

हे विरूपाक्ष ! अब तिमी यहाँबाट दुई हजार धनु पर वायव्यदिशामा रहनुभएका कोटीश्वर भगवान्को नजिकै जाऊ। जसले आनन्द भएर यस अध्याय सुन्छ, त्यसले त्यस तीर्थमा स्नान गरेको फल पाउँछ। बोली, हृदय र शरीरका अङ्गबाट भएका सम्पूर्ण पापबाट मुक्त भएर त्यो व्यक्ति अवश्य स्वर्ग जान्छ ॥३०-३१॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा हनुमान्तीर्थको माहात्म्यनामक
एकसय छयालिसौं अध्याय पूरा भयो ॥

---

१२. प्रस्तरामयम्, इति न.सं.पु.पाठः। १३. किष्किन्ध्यां प्रययौ शीघ्रम्, इति न.सं.पु.पाठः।
१४. स्नायतेऽत्र च, इति न.सं.पु.पाठः।

# सप्तचत्वारिंशदुत्तरशततमोऽध्यायः

## रुद्रधारातीर्थ-कोटीश्वरशिवलिङ्गयोर्माहात्म्यम्

### स्कन्द उवाच

भूयोऽगमद्विरूपाक्षो यत्र कोटीश्वरो विभुः। राधशुक्लचतुर्थ्याञ्च मुनिना सह कुम्भज ॥१॥
कुशहस्तो द्विजो भक्त्या सस्नौ सङ्कल्प्य वै यथा। शङ्खमूले महातीर्थे सर्वतीर्थोत्तमोत्तमे ॥२॥
स उत्तरप्रयागाख्ये शङ्खमूले महत्तरे। स्नात्वा लिङ्गं समभ्यर्च्य चापृच्छन्नेमुनिं निशि ॥३॥
मुनिं प्रणम्य भक्त्या च विरूपाक्षो हृदा[1] पुनः। पप्रच्छ स महारात्रौ माहात्म्यं तीर्थलिङ्गयोः ॥४॥
आकर्ण्य तद्वचस्तत्र नेमुनिर्मुनिसत्तमः। व्याजहार शुभं वाक्यं तस्मै स्वसेविने[2] निशि ॥५॥

### ऋषिरुवाच

शृणु विप्र ! प्रवक्ष्यामि मुक्तः कश्चिद् द्विजाधमः। महाक्षेत्रे पुण्यभूमावत्रैव च पुरा द्विजः ॥६॥
अस्यां विराजते पश्य पुण्यभूमौ स्पृहार्थदम्। शङ्खमूलं महातीर्थं सर्वतीर्थोत्तमोत्तमम् ॥७॥
जलस्पर्शात् प्रमुच्यन्ते यत्र पातकिनो जनाः[3]। पश्य तीर्थवरं भद्रञ्चतुर्वर्गफलप्रदम् ॥८॥
पश्य रुद्रमुखोद्भूतां शिवगङ्गां विराजिताम्। लोकानां वरदां नित्यं स्नातकानामनुत्तमाम् ॥९॥
मणिगङ्गाञ्च पश्यार्य भास्वत्प्रभां प्रवाहिताम्[4]। रुद्रशीर्षोद्भवां पुण्यां नृणां मुक्तिवरप्रदाम् ॥१०॥
अत्रोद्भूता महापुण्या रुद्रगङ्गा विराजिता। पुराकृतमहापापपातकानां विनाशिनी[5] ॥११॥

---

## अध्याय - १४७

### रुद्रधारातीर्थ र कोटीश्वर शिवलिङ्गको महिमा

कार्तिक स्वामीले भन्नुभयो - हे अगस्त्य मुनि ! त्यसपछि विरूपाक्ष वैशाखशुक्ल चतुर्थीका दिन नेमुनिलाई साथमा लिएर जहाँ कोटीश्वर भगवान् बस्नुहुन्थ्यो, त्यसै ठाउँमा गए। हातमा कुश लिएर सङ्कल्प गर्दै विरूपाक्षले सबै तीर्थमा उत्तम तथा शङ्खमूलमा अवस्थित महातीर्थमा भक्तिपूर्वक स्नान गरे। उत्तरप्रयाग नाम गरेको महत्त्वपूर्ण शङ्खमूल तीर्थमा स्नान गरेर शिवलिङ्गको पूजा गरिसकेपछि विरूपाक्षले राति नेमुनिसित सोधे। विरूपाक्षले भक्तिपूर्वक पहिले नेमुनिलाई प्रणाम गरे, अनि उनले रातमा तीर्थ र लिङ्गको माहात्म्य उनीसित सोधे। राति विरूपाक्षले गरेको प्रश्न सुनेर सिद्धऋषि मुनिश्रेष्ठ नेमुनिले आफ्ना भक्त विरूपाक्षलाई कल्याणमय माहात्म्य बताउनुभयो ॥१-५॥

ऋषिले भन्नुभयो - हे विरूपाक्ष ! सुन, म बताउँछु। यस पुण्यभूमि भएको महाक्षेत्रमा अघि अधम ब्राह्मणले मुक्ति पाएका थिए। यस पवित्र भूमिमा सम्पूर्ण मनका इच्छालाई पूर्ण गरिदिने, सबै तीर्थमा उत्तम शङ्खमूल नाम गरेको तीर्थ विराजमान भएको छ। जुन तीर्थको जल छोयो भने मात्रै पनि ठूला-ठूला पाप गर्ने व्यक्तिहरू मुक्त हुन्छन्। चतुर्वर्ग फल उपलब्ध गराउने अर्थात् धर्म, अर्थ, काम र मोक्षनामका चारथरी पुरुषार्थको फल दिने कल्याणदायी त्यस उत्तम तीर्थको दर्शन गर ॥६-८॥

स्नान गर्ने प्राणीहरूलाई सधैँ उत्तम वर दिने शिवजीको मुखबाट निस्किएकी शिवगङ्गा यसै ठाउँमा विराजमान भएकी छन्, हेर। हे विरूपाक्ष ! सधैँ चम्किलो कान्ति भएकी, शिवजीको शिरबाट उत्पन्न भएकी, मानिसलाई मुक्तिरूपी वर दिने पवित्र मणिगङ्गाको दर्शन गर। यहीँबाट अत्यन्त पवित्र रुद्रगङ्गा पैदा भएकी छन्। यिनले अघि गरेका पाप र महापापहरूलाई नाश गरिदिन्छिन् ॥९-११॥

---

१. मुने, इति न.सं.पु.पाठः।
२. स्वभक्तिने, इति न.सं.पु.पाठः।
३. महापातकिनो यत्र प्रमुच्यन्ते जलस्पृशात्, इति न.सं.पु.पाठः।
४. भास्वत्प्रभाहितां सदा, इति न.सं.पु.पाठः।
५. पुराकृतान्महापापान्पापकानपि नाशिनी, इति न.सं.पु.पाठः।

रुद्रधारा च पातालगङ्गा ज्ञेयाऽघहारिणी। स्वर्गार्थिभिः सुरैर्दैत्यैः सिद्धर्षिभिः प्रसेविता ॥१२॥
मणिमती तथा ज्ञेया व्योमगङ्गा सुखप्रदा। बलैश्वर्य्यप्रदा नित्यं राज्यार्थिभिः प्रसेविता ॥१३॥
भागीरथी तथा ज्ञेया वाग्वतीयं महानदी। धर्मार्थकामदाऽजस्रं मोक्षार्थिभिः प्रसेविता ॥१४॥
पुण्यभूमिर्महाक्षेत्रं तस्माद् विद्धि द्विजोत्तम। त्रिगङ्गासङ्गमं यासु चैकाऽपि दुर्लभा त्रिषु ॥१५॥
तिस्रः कोट्यर्द्धकोटीभिरध्यास्तेऽमरनिम्नगा। यावत्स्वर्गोद्भवैस्तीर्थैः पातालसम्भवैः सह ॥१६॥
जम्बुद्वीपवरिष्ठैश्च क्षेत्रैर्नेपालसम्भवैः। जम्बुद्वीपवरिष्ठञ्च क्षेत्रं नेपालकं विदुः ॥१७॥
अपि तस्मिन्निदं शैवं पुण्यभूमिमहत्तरम्। भागीरथ्याश्चतुर्भिश्च गुणैर्युक्तं महत्तरम्[६] ॥१८॥
शङ्खमूलं महातीर्थं त्रिगङ्गासङ्गमं यतः। शङ्खो लब्धवरश्चाऽभूच्चिरञ्जीवी तपस्यया ॥१९॥
रुद्रगङ्गातटे चाऽत्र कोटीश्वरप्रसादतः। व्यासो मुनिवरश्चाऽत्र तेपे रक्षो विभीषणः ॥२०॥
सप्तर्षयस्तथा सिद्धाः सुचिरञ्जीविनो परे। कुष्ठवन्तो विमुच्यन्ते कुष्ठात् पातकिनस्तथा[७] ॥२१॥
रुद्रधारामहातीर्थे स्नानाद्धि सर्वकिल्विषैः। शृणु सिद्ध प्रवक्ष्यामि कश्चिन्मुक्तः पुरात्र वै ॥२२॥
माहात्म्यं रुद्रधारायास्त्रिगङ्गासङ्गमाश्रितम्। कश्चिद्विप्रः पुरा चासीदुज्जयिनी पुरे वसन् ॥२३॥
सोऽवधीत्पितरं युद्धे कालाद् गङ्गातटे मृतः। गङ्गायां मरणात्[८] पुण्याद्विप्रोऽभवत्पुनर्हि सः ॥२४॥

---

पापनाश गरिदिने रुद्रधारालाई तिमी पातालगङ्गा भनेर जान। स्वर्गको आकाङ्क्षा राख्ने देवता, दैत्य, सिद्ध र ऋषिहरूले सधैँ यिनको सेवा गर्दछन्। प्राणीहरूलाई कल्याण गर्ने मणिमतीलाई व्योमगङ्गा अर्थात् आकाशगङ्गा भनेर जान। यिनले बल तथा ऐश्वर्य दिन्छिन्, राज्यको कामना गर्ने व्यक्तिहरूले सधैँ यिनको सेवा गर्दछन्। यी महानदी वाग्वतीलाई भागीरथी भनेर बुझ। यिनको सेवा गर्ने व्यक्तिहरूलाई यिनले धर्म र काम दिन्छिन्। मुमुक्षुहरूले सधैँ यिनको सेवा गर्छन् ॥१२–१४॥

हे विरूपाक्ष ! यी तीनवटा नदीमध्ये एउटा नदी पनि अरू क्षेत्रमा उपलब्ध हुन सक्दैन। यहाँ तीनवटै गङ्गाको सङ्गम छ, त्यसैले यस क्षेत्रलाई पुण्यभूमि भनेर ठान। यस पुण्यभूमिमा स्वर्ग तथा पातालमा भएका तीन करोड पचास लाख तीर्थहरूका साथ स्वर्गङ्गा बसेकी छन्। विभिन्न तीर्थहरूका कारण अत्यन्त महनीय बनेका नेपालवर्ती क्षेत्रहरूले गर्दा यो क्षेत्र जम्बूद्वीपमा नै सबैभन्दा महत्त्वपूर्ण बनेको छ। त्यसमा पनि पुण्यभूमिले गर्दा यो महत्त्वपूर्ण हुनपुगेको शिवजीको क्षेत्र हो। यहाँ भागीरथीको भन्दा चारगुना बढी प्रभावकारिता छ ॥१५–१८॥

शङ्खमूल नाम गरेको यस महातीर्थमा तीनवटा गङ्गाहरूको सङ्गम छ। यसै ठाउँमा तपस्या गरेर शङ्खासुरले चिरञ्जीवी हुने वर पाएको थियो। यसै रुद्रगङ्गाको तटमा कोटीश्वर भगवान्बाट वर प्राप्त गरेर व्यास मुनिश्रेष्ठ भए। यसै ठाउँमा विभीषण नाम गरेका राक्षसले तपस्या गरेका थिए। सप्तऋषि तथा सिद्धहरू यसै ठाउँमा तपस्या गरेर चिरञ्जीवी भए। रुद्रधारा तीर्थमा स्नान गर्नाले कुष्ठरोगी कुष्ठरोगबाट मुक्त हुन्छ। त्यसैगरी महापापीहरू पनि सबैथरी पापबाट मुक्त हुन्छन्। रुद्रधारा र त्रिगङ्गाको सङ्गममा आश्रय लिएको हुँदा अघि यहाँ कुनै व्यक्ति मुक्त भएको थियो, हे सिद्ध ! त्यसको माहात्म्य सुन ॥१९–२२॥

अघि कुनै समयमा उज्जयिनी शहरमा एक जना ब्राह्मण बस्दथे। उनले युद्धमा आफ्ना बाबुलाई पनि मारे। केही समयपछि बितेपछि उनी कालगतिले गङ्गाजीको तीरमा मरे। गङ्गातटमा मरेको प्रभावले गर्दा अर्को जन्ममा ब्राह्मण भएर नै जन्मिए ॥२३ –२४॥

---

६. भागीरथ्याश्चतुर्णाञ्च गुणं ज्ञेयं महत्तरम्, इति न.सं.पु.पाठः। ७. कुष्ठवान्मुच्यते कुष्ठान्महापातकिनस्तथा, इति न.सं.पु.पाठः।
८. गङ्गातीरमृतात्, इति न.सं.पु.पाठः।

पितृहत्याघसंलिप्तः[९] सर्वभुक् च रुषाऽन्वितः। पिपासार्त्तो रुषायुक्तो जलाभावे त्वरान्वितः ॥२५॥
स्वपत्नीं गुर्विणीं विप्रः पादेनैव जघान सः। स्त्रीबालहत्यया लिप्तस्तर्जितः सकलैर्जनैः[१०] ॥२६॥
विनिःसृतः पुराद्विप्रो ब्रह्मपिशाच आश्रुतः। मांसलुब्धोऽभवत् दृष्ट्वा[११] चरन्तीं कानने च गाम् ॥२७॥
रहो जघान खड्गेन चाऽभौक्षीत्पिशितं[१२] हि तत्। आलोक्य रक्षको विप्रो भुक्तवन्तं तदामिषम् ॥२८॥
लगुडेन जघानार्य तमभिद्रुत्य गर्हयन्। सोऽपि ब्रह्मपिशाचश्च द्विजं गोरक्षकं पुनः ॥२९॥
तं जघानाऽसिना शीघ्रं समुद्दिश्य च तद्गलम्। गङ्गायां मरणात्[१३] पुण्यादग्रजन्मा हि जातितः ॥३०॥
तत्पापैर्लिप्तगात्रोऽसौ व्रणी कुष्ठी ह्यभूद् भृशम्। ददर्शाऽत्र मुनीन् सिद्धान् पूजकाँस्तान् शिवं मुदा ॥३१॥
ततो ब्रह्मपिशाचश्च मार्गशुक्लाष्टमीदिने। सनच्च भगवानाद्यः सनकश्च महाविभुः ॥३२॥
सनातनश्च विश्वात्मा सनन्दनो वरप्रदः। सनत्कुमार एवार्यो ब्रह्मा च कपिलस्तथा ॥३३॥
एतान्ददर्श पापोऽसावेतत्तीर्थतटेषु च। मरीच्यत्री पुलस्त्यञ्च भृगुमङ्गिरसं ऋतुम् ॥३४॥
पुलहं नारदं गर्गं वसिष्ठं गौतमं तथा। याज्ञवल्क्यञ्च संवर्त्तं पैठीनसं यमं मनुम् ॥३५॥
आपस्तम्बञ्च हारीतं कात्त्यायनञ्च देवलम्। विष्णुं बौधायनं चाऽन्यमपश्यच्च सहस्रशः ॥३६॥
तर्पयन् यो मुदा पितॄन् पूजयन् बालुकं शिवम्[१४]। एतत्तीर्थेषु संस्नाय स्थितः कश्चित् तटे यतिः[१५] ॥३७॥
तस्मै ब्रह्मपिशाचाय शुभं वाक्यं जगाद हि[१६]।

---

बाबुको वधबाट उत्पन्न पापले ग्रस्त भएका सर्वाहारा ती ब्राह्मण पानी खान नपाएर रिसाए। उनले गर्भवती आफ्नी पत्नीलाई लात्तीले हानेर मारे। स्त्रीहत्या र बालहत्याको पापले गर्दा सबै मानिसहरूले तिनलाई अति नै गाली गरे। त्यसपछि ती ब्राह्मण ब्रह्मपिशाच भएर गाउँबाट बाहिर निस्किए। जङ्गलमा चरिरहेको गाईलाई देखेर ती गाईको मासुमाथि उनको मन लोभियो। उनले एकान्त पारेर तरबारले हाने र गाईलाई मारे। त्यसपछि गाईको रगत खाए। गाईका स्वामी ब्राह्मणले मासु खान लागेको त्यस ब्राह्मणलाई देखेर दौडँदै आई गाली गर्दै लौराले हिर्काए। गाई हेर्ने ती ब्राह्मणलाई ब्रह्मपिशाचरूपी ती ब्राह्मणले तुरुन्त तरबार उठाए र घाँटीमा हानेर तत्कालै मारिदिए ॥२५-२९½॥

यतिविधि पाप गरेको भए पनि त्यो हत्यारा ब्राह्मण गङ्गातीर्थमा मरेको हुनाले ब्राह्मण भएर फेरि पैदा भयो। ब्राह्मणको हत्या गरेको पापले गर्दा उसको शरीरभरि खटिरै खटिरा आए। त्यो कुष्ठरोगले अत्यन्त पीडित भयो। उसले यस ठाउँमा प्रसन्न भएर शिवजीको पूजा गर्न लागेका ऋषि र सिद्धहरूलाई देख्यो। त्यसपछि त्यस पापी ब्रह्मपिशाचले मार्गशुक्ल अष्टमीका दिन भगवान् सनत, महाविभु सनक, विश्वात्मा सनातन र वरदाता सनन्दन, सनत्कुमार, ब्रह्मा तथा कपिल नाम गरेका ऋषिहरूलाई त्यसै तीर्थको तटमा देख्यो ॥३०-३३॥

त्यसैगरी उसले पितृहरूको तर्पण गर्न लागेका बालुवाले बनाएको शिवलिङ्गलाई सहर्ष पूजा गर्न लागेका मरीचि, अत्रि, पुलस्त्य, भृगु, अङ्गिरा, ऋतु, पुलह, नारद, गर्ग, वसिष्ठ, गौतम, याज्ञवल्क्य, संवर्त, पैठीनस, यम, मनु, आपस्तम्ब, हारीत, कात्यायन, देवल, विष्णु, बोधायन र अरू पनि यस तीर्थमा स्नान गरेर भक्तिपूर्वक नियमका साथ तर्पण गर्न लागेका ऋषिहरूलाई देख्यो। उनीहरूले पनि ब्रह्मपिशाच भएको त्यस ब्राह्मणलाई देखे ॥३४-३६॥

माथि बताइएका तीर्थरूमा स्नान गर्ने कुनै संन्यासी पनि त्यहीँ थिए। बालुवाको शिवलिङ्ग स्थापना गरेर पूजा गर्दै तटमा बसिरहेका तिनै संन्यासीले त्यस ब्रह्मपिशाचको कल्याणका लागि शुभवचन भन्न लागे ॥३७½॥

---

९. पितृवधेन सो लिप्तः, इति न.सं.पु.पाठः।
१०. तर्ज्यः सर्वजनैरिह, इति न.सं.पु.पाठः।
११. मांसलुब्धमनोऽभूत्स, इति न.सं.पु.पाठः।
१२. अभोजीत्, इति न.सं.पु.पाठः।
१३. गङ्गातीरे मृतात्, इति न.सं.पु.पाठः।
१४. तर्प्ययन्तं मुदा कश्चित्पूजकं बालुकं शिवम्, इति न.सं.पु.पाठः।
१५. एतत्तीर्थेषु संस्नात्वा स यतिर्भक्तितो द्विज, इति न.सं.पु.पाठः।

यतिरुवाच

रे रे पापिष्ठ ! पश्यैतानृषीन् धर्माश्रितान् सदा ॥३८॥

एतत्तीर्थेषु संस्नाय बालुमयहराच्र्चकान्। स्नाहि चाऽत्र महातीर्थे ततो मोक्ष्यसि पापतः ॥३९॥

महापापैर्विलिप्ताङ्ग ! चेहाऽमुत्र कृतैरपि। विमुच्यते जनः पापात् सद्योऽत्र जलमर्शनात्[१७] ॥४०॥

गोविप्रपितृबालस्त्रीहतिजैरन्यजैस्तथा।

ऋषिरुवाच

इत्युपदिश्य स्नात्वा स समारोहत् यतिः स्थलीम्[१८] ॥४१॥

एतल्लिङ्गं समभ्यर्च्य जजाप तन्मनुं रहः। सोऽपि सस्नौ तदा भक्त्या चैतच्छ्रोतसि सञ्चरन् ॥४२॥

कुष्ठव्रणार्तिव्यग्रत्वात्[१९] शनैः शनैर्निमज्य च। जलादुत्तीर्य पूर्वं स कृतं पापमबूबुधत्[२०] ॥४३॥

पितृघातादिकं सर्वमभक्ष्यभक्षितं च यत्। ततो दुःखप्रदग्धाङ्गः संस्मृत्य तत् कृतं पुरः[२१] ॥४४॥

नारदं कृतपापानां[२२] चाऽपृच्छन्मोचनं हि तत्।

ब्रह्मपिशाच उवाच

नमस्ते भगवन्तुभ्यं सर्ववार्त्ताविदे सते[२३] ॥४५॥

नारद ! ब्रह्मपुत्राय कृपाशील ! नमोऽस्तु ते। कथं मोक्ष्यामि तत्पापादज्ञानतः पुरा कृतात् ॥४६॥

गोविप्रपितृबालस्त्रीवधाज्जाताद् वद प्रभो[२४]।

---

यतिले भने – हे पापिष्ठ ब्रह्मपिशाच ! यस तीर्थमा स्नान गरेर बालुवाको शिवलिङ्गलाई पूजा गर्न लागेका धर्मात्मा ऋषिहरूलाई हेर्। हे महापापी ! तँ पहिले यस महातीर्थमा स्नान गर। त्यसपछि यस लोक र परलोकमा गरेका महापापबाट तैँले मुक्ति पाउनेछस्। यस तीर्थको जललाई स्पर्श गऱ्यो भने गाई, ब्राह्मण, बाबु, बालक र स्त्रीको हत्या गरेको हत्याजन्य पापद्वारा मुक्त होइन्छ ॥३८-४०॥

नेमुनिले भन्नुभयो – त्यसलाई यस्तो उपदेश दिएर ती संन्यासी स्नान गरी आफ्नो आश्रमतिर उक्लिए। शिवजीको पूजा गरी एकान्तमा बसेर शिवमन्त्र जपे। उसले पनि भक्तिपूर्वक त्यस तीर्थमा कुष्ठरोगको घाउले आत्तिएर डराएको हुँदा विस्तार विस्तार डुबेर शिवजीलाई सम्झदै स्नान गऱ्यो। पानीबाट निस्किएपछि त्यसले बाबुको हत्या गरेको र खान नहुने कुरा खाएको आदि आफूले पहिले गरेका सम्पूर्ण पापकर्महरूलाई सम्झियो। आफूले पहिले गरेका कामहरूलाई सम्झिएर अत्यन्त दुःखित हुँदै नारदको नजिकमा ऊ गयो र उसले ती पापहरूबाट मुक्त हुने उपाय नारदसँग सोध्यो ॥४१-४४॥

ब्रह्मपिशाचले भन्यो – सारा कुरा जान्ने हे भगवन् ! हजुरलाई नमस्कार छ। हजुर ब्रह्माका छोरा हुनुहुन्छ, कृपालु हे नारदजी ! हजुरलाई नमस्कार छ। पहिले नजानीकन गरिएका पापहरू, गाई, ब्राह्मण, बाबु, बालक र स्त्रीजातिलाई मारेका पाप तथा खान नहुने करा खाएर भएको पापबाट म कसरी मुक्त हुन्छु ? ॥४५ -४६॥

---

१६. व्याजहार शुभं वाक्यं तस्मै ब्रह्मपिशाचिने, इति न.सं.पु.पाठः।
१७. एतज्जलस्पृशात्सद्यो बहुपापैर्विमुच्यते, इति न.सं.पु.पाठः।
१८. इत्युपदिश्य तस्मै स स्नात्वा समारुहत् स्थलीम्, इति न.सं.पु.पाठः।
१९. कुष्ठव्रणार्त्तभीष्माच्च, इति न.सं.पु.पाठः।
२०. जलादुत्तीर्य पूर्वं स यत्तत्कृतानबूबुधत्, इति न.सं.पु.पाठः।
२१. तत्कृतान्पुरः, इति न.सं.पु.पाठः।
२२. समुपागम्य, इति न.सं.पु.पाठः।
२३. सर्ववार्त्ताविशारदे, इति न.सं.पु.पाठः।
२४. पापादभक्षतः, इति न.सं.पु.पाठः।

ऋषिरुवाच

इत्युक्त्वाऽसौ मुनेः पादं स्प्रष्टुं तस्याऽन्तिकं[२५] ययौ ॥४७॥

करपुटं समुत्सार्य नतमूर्द्धाऽपतद् भुवि। अस्पृश्यञ्च तमालोक्य नारदो हि समुत्सरन्[२६] ॥४८॥

अतिभूमिर्मुनिस्तस्मै वचोऽवोचद्विदूरतः।

नारद उवाच

अत्र स्नाह्यनिशं पाप महीतीर्थेऽघनाशके ॥४९॥

साक्षाल्लिङ्गं समभ्यर्च्य ततो वाञ्छां प्रलप्स्यसे।

व्याप्य संवत्सरञ्चैकं नित्यस्नायी शुचिर्भव। एकसंवत्सरं यावदत्र स्नानेन ते सदा ॥५०॥

विनश्यन्ति हि पापानि द्वादशापि कृतानि च[२७]। त्रिगङ्गासङ्गमे स्नात्वा पुण्यस्थल्यां विकिल्विषः ॥५१॥

ऋषिरुवाच

इत्युपदिश्य तस्मै स नारदस्तत्क्षणाद् द्विज ॥५२॥

पुण्यस्थलीं समारुह्य कोटीश्वरमपूपुजत्। मुनयश्चैव संभूय महालिङ्गमपूपुजन् ॥५३॥

पञ्चोपचारकैर्भक्त्या परिक्रम्य स्तवैर्मुहुः[२८]।

ततः सस्नौ पिशाचोऽसौ चाऽस्मिन्तीर्थे निरन्तरम् ॥५४॥

मार्गशीर्षं मुहुर्व्याप्य वसन्तत्र शिवं स्मरन्। मिथ्यावादोद्भवाः दोषाः[२९] पूर्णिमायां जलाप्लवात् ॥५५॥

इहाऽमुत्र कृतास्तत्र विनश्यन्ति स्म सिद्धराद्। व्याप्य पौषं पुनः सस्नौ ब्रह्मपिशाच आदितः ॥५६॥

सङ्कल्प्य च मुदा भक्त्या कुशहस्तो यथाविधि। सुवर्णस्तेयजं पापं तस्य नाशमगात् पुनः[३०] ॥५७॥

---

नेमुनिले भन्नुभयो – यति भनेर यो ब्रह्मपिशाच नारदजीको पाउमा स्पर्श गर्न उहाँको नजिकै गयो। हात फैलाएर नम्र हुँदै भुइँमा पसारियो। त्यो देखेर यो अस्पृश्य छ भन्ने ठानी नारदजीले त्यसो नगर भन्दै यढैबाट भन्नुभयो ॥४७-४८॥

नारदजीले भन्नुभयो – हे पापिष्ठ ! तँ पाप नाश गर्ने यस महातीर्थमा एक वर्षसम्म दिनदिनै स्नान गरेर पवित्र बन्। एक वर्षसम्म तैँले यस तीर्थमा स्नान गरिस्भने तेरा पहिले गरेका बाह्रै किसिमका पापहरू नाश हुन्छन्। तीन गङ्गाको सङ्गम भएको यस पुण्यस्थलीमा स्नान गरेर पापबाट मुक्त भई साक्षात् भगवान् शङ्करको लिङ्गको आराधना गर, त्यसो गरिस् भने तैँले इच्छा लागेको फल पाउनेछस् ॥४९-५१॥

नेमुनिले भन्नुभयो – हे विरूपाक्ष ! यति उपदेश दिएर नारदमुनि आफ्नो आश्रम अर्थात् निवासस्थानमा जानुभयो र कोटीश्वरको पूजा गर्नुभयो। ऋषिहरूले आपसमा मिलेर भक्तिपूर्वक परिक्रमा गरी बारम्बार स्तुति गर्दै पञ्चोपचारविधिले त्यस महालिङ्गको पूजा गरे ॥५२-५३½॥

त्यस पिशाचले त्यसै तीर्थमा बसेर हरघडी शिवजीको स्मरण गर्दै मंसिर महिनाभरि स्नान गर्‍यो। हे विरूपाक्ष ! पूर्णिमाको दिनसम्म गरेको त्यो स्नानले गर्दा झूटो बोलेको दोषबाट उत्पन्न भएका तथा यस लोक र परलोकमा गरेका अन्य पापहरू पनि नाश भए। त्यस ब्रह्मपिशाचले १ गतेदेखि हातमा जलकुश लिएर प्रसन्न हुँदै विधिपूर्वक सङ्कल्प गरेर पौष महिनाभरि नित्य स्नान गर्‍यो। सुनको चोरीबाट भएका पापहरू र यो जन्म र पूर्वजन्ममा गरेका सबै पापहरू पनि पूर्णिमाको दिन नाश भए ॥५४-५७½॥

---

२५. स्पर्शितुमन्तिकम्, इति न.सं.पु.पाठः।
२६. समुच्चरत, इति न.सं.पु.पाठः।
२७. विनश्यन्ति च ते पापा द्वादशापि पुरा कृताः, इति न.सं.पु.पाठः।
२८. स्तुवन्मुहुः, इति न.सं.पु.पाठः।
२९. पापाः, इति न.सं.पु.पाठः।
३०. सुवर्णस्तेयजाः पापा विनश्यन्ति स्म तस्य च, इति न.सं.पु.पाठः।

परत्रेह कृतं चाऽपि पूर्णिमायां निरन्तरम् । सस्नौ माघं पुनर्व्याप्य पिशाचोऽसौ निरन्तरम् ॥५८॥
सम्पूज्य विधिवद्रुद्रं बालुकाभिः सुनिर्मितम् । पूर्णिमायां ततस्तस्य विनश्यति स्म सर्वशः ॥५९॥
अभक्ष्यभक्षणात् पापमिहलोकपरत्रजम् । संव्याप्य फाल्गुनं मासं दर्भपाणिर्यथाविधि ॥६०॥
अस्मिन्तीर्थे मुदा सस्नौ पिशाचोऽसौ हि भक्तितः । ततश्च पूर्णिमायां वै किल्विषाणि गतानि हि[३१] ॥६१॥
मद्यपानसम्भवानि कृच्छ्रसाध्यानि तानि च[३२] । सस्नौ मधुं पुनर्व्याप्य पिशाचोऽत्र सुभक्तितः ॥६२॥
बालुजं शिवमभ्यर्च्य[३३] चास्मिन्तीर्थे निरन्तरम् । नश्यति स्म ततस्तस्य परद्रव्यापहारजम् ॥६३॥
इहामुत्र कृतं पापं पूर्णिमायां जलाप्लवात् । ततो ब्रह्मपिशाचोऽसौ चास्मिन्तीर्थे पुनर्भृशम् ॥६४॥
सस्नौ च विधिवद् भक्त्या वैशाखं व्याप्य नित्यशः । अगम्यगमनोद्भूतं नाशयितुञ्च किल्विषम्[३४] ॥६५॥
अतिकृच्छ्रादसाध्यं तत् पूर्णिमायां हि तस्य च । ज्येष्ठं व्याप्य पुनः सस्नौ ब्रह्मपिशाच आदरात् ॥६६॥
सङ्कल्प्य विधिवत्तीर्थे कुशपाणिर्निरन्तरम्[३५] । पूर्णिमायां समाप्तायां नश्यति स्म च किल्विषम् ॥६७॥
मुखदोषोद्भवं पापमसाध्यमपि निर्गतम्[३६] । आषाढं व्याप्य संसस्नौ पिशाचोऽसौ निरन्तरम् ॥६८॥
रुद्रधारोदये तीर्थे त्रिगङ्गासङ्गमे शुभे । आषाढ्यां पूर्णिमायाञ्च स्त्रीहत्याकिल्विषं गतम्[३७] ॥६९॥
कृच्छ्रातिकृच्छ्रसाध्यञ्च गतं पापं[३८] जलाप्लवात् । संसस्नौ श्रावणं व्याप्य पिशाचो दर्भहस्तकः ॥७०॥
भक्त्या सङ्कल्प्य तीर्थेऽस्मिन्नुद्रधारासुसङ्गमे । पूर्णिमायां समाप्तायां भ्रूणहत्या विनिर्गता[३९] ॥७१॥

---

माघमहिनाभरि नित्य स्नान गरेर उसले विधिपूर्वक बालुवाले बनाएको भगवान् शिवको लिङ्गमा पूजा गऱ्यो । पूर्णिमाको दिन अभक्ष्य वस्तु खानाले पैदा भएका पाप तथा यस लोक र परलोकमा गरेका सम्पूर्ण पापहरू नाश भए । त्यसपछि यस पिशाचले हातमा कुश लिएर सङ्कल्प गर्दै विधिपूर्वक प्रसन्न भएर फाल्गुनमहिनाभरि सभक्ति स्नान गऱ्यो । कष्टले मात्र हटाउन सकिने तथा रक्सी खानाले पैदा भएका उसका पापहरू पूर्णिमाको दिन नाश भए ॥५८–६१॥

त्यसपछि त्यस पिशाचले चैत्रमहिनाभरि भक्तिपूर्वक यस तीर्थमा नित्य स्नान गरेर बालुवाले बनाएको शिवलिङ्गको पूजा गऱ्यो । त्यसै महिनाको पूर्णिमाको दिन स्नान गरेपछि अरुको द्रव्य चोरेर लागेका त्यसका यस लोक र परलोकका सबै पापहरू नाश भए । त्यसपछि यस ब्रह्मपिशाचले यस तीर्थमा वैशाखभरि विधिपूर्वक सभक्ति सधैँ स्नान गऱ्यो । त्यसै महिनाको पूर्णिमाको दिन अगम्या स्त्रीमा गमन गरेर लागेका तर हटाउन बडो मुस्किल पर्ने त्यसका पापहरू नाश भए । त्यस ब्रह्मराक्षसले फेरि जेठभरि जलकुश हातमा लिई सङ्कल्प गरेर सधै यस तीर्थमा विधिपूर्वक स्नान गऱ्यो । हे विरूपाक्ष ! त्यस महिनाको पूर्णिमाको समाप्तिपछि हटाउन मुस्किल पर्ने मुखको दोषबाट उत्पन्न पापहरू पनि नाश भएर गए ॥६२–६७½॥

तीनवटै गङ्गा मिलेको रुद्रधारा तीर्थमा यस पिशाचले आषाढभरि सधैँ स्नान गऱ्यो । त्यस तीर्थमा स्नान गर्नाले आषाढपूर्णिमाको दिन त्यसले गरेका कठिनभन्दा कठिन परिश्रमबाट हटाउन सकिने स्त्रीहत्या र अरू पापहरू पनि नाश भए । रुद्रधाराको सङ्गमस्थल भएको यस तीर्थमा भक्तिपूर्वक हातमा जलकुश लिई सङ्कल्प गरेर त्यस पिशाचले श्रावण महिनाभरि स्नान गऱ्यो । त्यसै महिनाको पूर्णिमाको समाप्ति भएपछि कृच्छ्रसाध्य पाउले हिर्काउँदा पैदा हुने पाप र भ्रूणहत्याजन्य पाप नाश भयो ॥६८–७१½॥

---

३१. विनश्यन्ति स्म किल्विषाः, इति न.सं.पु.पाठः ।
३२. मद्यपानोद्भवाः तस्य कृच्छ्रसाध्याः तथापि च, इति न.सं.पु.पाठः ।
३३. बालुकाजं शिवं पूज्य, इति न.सं.पु.पाठः ।
३४. अगम्यगमनोद्भूताः पापा नश्यन्ति स्म च तत, इति न.सं.पु.पाठः ।
३५. सदात्र वै, इति न.सं.पु.पाठः ।
३६. मुखदोषादभवाः पापा असाध्यास्तस्य सिद्धभाक्, इति न.सं.पु.पाठः ।
३७. तस्य वै तदा, इति न.सं.पु.पाठः ।
३८. नश्यन्ति स्म, इति न.सं.पु.पाठः ।
३९. विनश्यति, इति न.सं.पु.पाठः ।

पादाघातोद्भवं पापं चाऽसाध्यमपि निर्गतम्[४०] । व्याप्य भाद्रं मुदा सस्नौ पिशाचो नित्यशः पुनः ॥७२॥
त्रिगङ्गासङ्गमे तीर्थे सङ्कल्प्यार्य यथाविधि । पूर्णिमायाञ्च तत्पापं गोहत्याजनितं गतम्[४१] ॥७३॥
कृच्छ्रातिकृच्छ्रतो साध्यं महापापं बहिर्गतम्[४२] । आश्विनं व्याप्य संसस्नौ ब्रह्मपिशाचः सादरम्[४३] ॥७४॥
यथोक्तविधिना तीर्थे महापापविनाशके । पूर्णिमायां समाप्तायां ब्रह्महत्यादि किल्विषम्[४४] ॥७५॥
विनश्यति स्म तीर्थेऽस्मिन्मासमात्रं जलाप्लवात् । व्याप्य श्रीकार्त्तिकं मासं सस्नौ स विधिनाऽनिशम् ॥७६॥
तीर्थे ब्रह्मपिशाचोऽसौ महापातकनाशके । पूर्णिमायां समाप्तायां पितृहत्यादि किल्विषम्[४५] ॥७७॥
सर्वपापहरे तीर्थे नश्यति स्म जलाप्लवात् । एवं सस्नौ पिशाचोऽसौ पर्वसु च विशेषतः ॥७८॥
अरुणोदयमारभ्य त्रिसन्ध्यायामभोजनः[४६] । ततोऽभवत् पिशाचोऽसौ निष्किल्विषकलेवरः[४७] ॥७९॥
पूर्वाच्छतगुणं शुभ्रो निर्गदश्चैव विज्वरः । अवोचन्मुनयस्तस्मै ब्रह्मपिशाच भोऽधुना ॥८०॥
निष्पापस्तेऽभवद्देह एतत्तीर्थप्रसादतः । पुण्यस्थलं समारुह्य कोटीश्वरं प्रपूजय ॥८१॥
सर्वयज्ञफलं प्राप्य ततः कामं प्रलप्स्यसे । मुनीनां वचनं श्रुत्वा पिशाचोऽसौ प्रहर्षितः ॥८२॥
वाग्वतीं खलु तुष्टाव चापरे च विशेषतः[४८] ।

---

हे विरूपाक्ष ! फेरि उसले तीनै वटा गङ्गा मिलेको तीर्थमा प्रसन्न हुँदै सङ्कल्प गरेर भाद्रमहिनाभरि सधैँ विधिपूर्वक स्नान गऱ्यो । पूर्णिमाको दिन बडो कष्टसित मात्र हटाउन सकिने उसले गरेका ठूला-ठूला पापहरू र गोहत्याजन्य पाप नाश भए । त्यस ब्रह्मपिशाचले फेरि ठूला-ठूला पापलाई नाश गर्ने यस तीर्थमा विधिपूर्वक आश्विनमहिनाभरि स्नान गऱ्यो । त्यस तीर्थको जलमा महिनाभर स्नान गरेको हुँदा त्यस महिनाको पूर्णिमाको समाप्ति भएपछि ब्रह्महत्या आदि गरिएका सबै पाप नाश भए ॥७२-७५॥

त्यस ब्रह्मपिशाचले ठूला-ठूला पापलाई नाश गर्ने त्यस तीर्थमा कार्तिक महिनाभर विधिपूर्वक सधैँ स्नान गऱ्यो । सम्पूर्ण पापलाई नाश गर्ने त्यस तीर्थमा स्नान गरेको हुँदा त्यसै महिनाको पूर्णिमाको समाप्ति भएपछि उसको पितृहत्याजन्य पाप नाश भयो । यसरी त्यस पिशाचले अरुणोदयदेखि लिएर तीनै सन्ध्यामा नखाईकन विशेष गरी पर्वका दिन स्नान गऱ्यो । त्यसपछि त्यस पिशाचले आफ्नो शरीरलाई पापरहित भएको अनुभव गऱ्यो । आफ्नो शरीर पहिलेभन्दा सय गुणा शुद्ध, रोगरहित र तापरहित भएको उसलाई अनुभव भयो ॥७६-७९½॥

ऋषिहरूले उसलाई भने - हे ब्रह्मपिशाच ! यी तीर्थको कृपाले गर्दा तेरो शरीर अब पापबाट मुक्त भयो । पुण्यवेदीमा चढेर अब कोटीश्वर भगवान्को पूजा गर । त्यसपछि सम्पूर्ण यज्ञ गरेको फल प्राप्त भई इच्छा पूर्ण हुनेछ । मुनिहरूको यो कुरा सुनेर त्यो पिशाच अत्यन्त खुसी भयो, अनि उसले दुई नदी अर्थात् मणिवती र रुद्रधारा तथा विशेष गरी वाग्वतीको स्तुति गऱ्यो ॥८०-८२½॥

---

४०. पादाघातोद्भवास्तस्य कृच्छ्रा साध्यास्तथापि च, इति न.सं.पु.पाठः ।
४१. पूर्णिमायाञ्च तत्पापा गोहत्या स्म विनश्यति, इति न.सं.पु.पाठः ।
४२. साध्या महापापाश्च तस्य च, इति न.सं.पु.पाठः ।
४३. आश्रुतः, इति न.सं.पु.पाठः ।
४४. तस्य च, इति न.सं.पु.पाठः ।
४५. तस्य च, इति न.सं.पु.पाठः ।
४६. त्रिसन्ध्यायां निराशनः, इति न.सं.पु.पाठः ।
४७. निष्पापश्च कलेवरः, इति न.सं.पु.पाठः ।
४८. तुष्टाव खलु वाग्वत्यै चापराभ्यां विशेषतः, इति न.सं.पु.पाठः ।

पिशाच उवाच

ॐ नाभिकुण्डसमुद्भूते रुद्रकण्ठाद्विनिःसृते ॥८३॥
वाग्वतीति श्रुता देवि ! जलमूर्त्यै नमोऽस्तु ते। रुद्रचूडारत्नभूते योगेश्वरि नमाम्यहम्[४९] ॥८४॥
मणिमतीति विख्याते ! जलमूर्त्यै नमोऽस्तु ते। रुद्रपादोद्भवे गङ्गे स्नपनार्थञ्च शूलिनः ॥८५॥
रुद्रधारेति विख्याते जलमूर्त्यै नमोऽस्तु ते। एकाङ्गं त्रिविधा भित्त्वा सा चोवाह[५०] महेश्वरी ॥८६॥
वाग्वती रुद्रधारेति मणिमतीति विश्रुता। नानारूपाङ्गधारिण्यै व्यक्ताव्यक्तस्वरूपिणि ॥८७॥
बहुमूर्त्यै महादेव्यै चैकरूपे नमोऽस्तु ते। वाग्वतीपूतकल्लोलैर्धर्ममय्यां विलुप्यति[५१] ॥८८॥
त्वयि निमज्जकानाञ्च पापकल्लोलसंहतिः। हेमाभायै त्रिनेत्रायै सर्वालङ्कारशोभिनि ॥८९॥
व्याघ्रचर्मोपवीतायै स्मितानने नमोऽस्तु ते। त्रिशूलं डमरुं मालां पुस्तकं बिभ्रतीं करैः ॥९०॥
ईषत्स्मिताननां देवीं द्रवीभूतां नमाम्यहम्। सर्वपापौघहारिण्यै सर्वलोकैर्नमस्कृते ॥९१॥
महापातकनाशिन्यै वरप्रदे ! नमोऽस्तु ते। तीर्थरूपे नदीनाञ्च तिसृणां[५२] सङ्गमोज्ज्वले ॥९२॥
द्रवीभूते महामूर्त्ति ! चागोचरे नमोऽस्तु ते। ब्राह्मी च वैष्णवी रौद्री मूर्तयस्ते महेश्वरि ॥९३॥
एतासां सरितां मूर्त्तिस्ताभिरेव प्रगच्छति[५३]। वाग्वति शिवगङ्गेऽजे त्रैलोक्यपावनि शिवे ॥९४॥
दुर्गे भवानि शर्वाणि उमेऽपर्णे नमोऽस्तु ते।

---

पिशाचले भन्यो – हे देवी ! हजुर नाभिकुण्डबाट उत्पन्न हुनुभएको छ। रुद्रकण्ठबाट हजुर निस्कनुभएको छ, वाग्वती नामले प्रसिद्ध हुनुहुन्छ। जलको मूर्ति लिने हे देवी ! हजुरलाई नमस्कार छ। हे योगेश्वरी ! हजुर भगवान् शङ्करको चूडामणिबाट पैदा भएर बग्नुभएको छ। मणिवतीको नामले हजुर प्रसिद्ध हुनुहुन्छ। जलको मूर्ति लिने हजुरलाई नमस्कार छ। भगवान् शङ्करलाई स्नान गराउनका लागि हे गङ्गा ! हजुर शिवजीको पाउबाट पैदा हुनुभएको छ। हजुरको नाम रुद्रधारा छ। यस्ती जलमूर्ति लिने हजुरलाई नमस्कार छ॥८३–८५½॥

एउटै अङ्ग अर्थात् पर्वतलाई तीनतिरबाट फोरेर वाग्वती, रुद्रधारा र मणिवती नामले हे महेश्वरी ! हजुर बग्नुभएको छ। व्यक्त तथा अव्यक्त स्वरूप लिएर विभिन्न रूप र अङ्गलाई धारण गर्ने अनेक मूर्ति भईकन पनि एउटै रूप लिने महादेवीलाई नमस्कार छ। वाग्वतीको पवित्र तरङ्गले परिपूर्ण भएको क्षेत्रमा निवास गर्ने र तपाईंको जलमा स्नान गर्ने भक्तहरूको सबै पापपुञ्ज नाश हुन्छ। सुवर्णको जस्तो कान्ति भएकी, तीन आँखा भएकी, अनेक गहनाले सिङ्गारिएकी र बाघको छाला ओढेकी हे प्रसन्नवदना ! हजुरलाई नमस्कार छ। त्रिशूल, डमरु, माला, पुस्तक धारण गर्ने, मुसुमुसु हाँस्ने जलस्वरूप भएकी देवीलाई म नमस्कार गर्छु॥८६–९०½॥

सम्पूर्ण पापको समूहलाई नाश गर्ने, सम्पूर्ण प्राणीहरूद्वारा नमस्कार गरिएकी, महापातकहरूलाई ध्वस्त गर्ने वरदायनी हे देवी ! हजुरलाई नमस्कार छ। तीनै नदीहरूको सङ्गमले गर्दा तीर्थका रूपमा देखापरेकी, जलको रूप लिने, सामान्य इन्द्रियले ज्ञान गर्न नसकिने हे महामूर्ति ! हजुरलाई नमस्कार छ। हे माहेश्वरी ! ब्राह्मी, वैष्णवी र रौद्री, यी तीनवटा तपाईंका मूर्ति हुन्। यी तीनैलाई साथमा लिएर तपाईं बग्नुभएको छ। हे वाग्वती ! हे शिवगङ्गा ! हे तीनै लोकलाई पवित्र पार्ने शिवा ! हे दुर्गा ! हे भवानी ! हे शर्वाणी ! हे उमा ! हे अपर्णा ! हजुरलाई नमस्कार छ॥९१–९४½॥

---

४९. रुद्रचूडामणेर्भूते योगेश्वरि प्रयास्यसि, इति न.सं.पु.पाठः।
५०. प्रववाह, इति न.सं.पु.पाठः।
५१. विनश्यति, इति न.सं.पु.पाठः।
५२. त्रयाणाम्, इति न.सं.पु.पाठः।
५३. मूर्त्तिस्ताभिराश्रित्य संवहन्, इति न.सं.पु.पाठः।

ऋषिरुवाच

इत्याकर्ण्य स्तवं विप्र ! पिशाचस्य तदा शिवा ॥९५॥

सङ्गमे त्वरितं नद्योरुन्ममज्ज जलान्तरात् । व्याचष्टे वचनं तस्मै वाग्वती सा स्मितानना ॥९६॥

वरं दातुं मुदा तीर्थे कृपाकल्लोलशालिनी ।

वाग्वत्युवाच

भो भो ब्रह्मपिशाचार्य ! द्विजोत्तमो भवाद्यतः ॥९७॥

निष्पापस्तव देहः स्यान्मयि स्नानाद्धि भक्तितः । सप्तजन्माज्जितैः पापैः सन्त्यक्तस्त्वं न संशयः ॥९८॥

महापातकजैः पङ्कैर्वाङ्मनोदेहजैस्तथा । चिरञ्जीव्याः सुपुत्रस्त्वमद्य प्रभृति सन्ततम् ॥९९॥

मत्प्रसादाच्च भूया वै रुद्रस्याऽनुचरोऽनिशम् । अद्यैव पूर्णिमायां त्वं कोटीश्वरं प्रपूजय ॥१००॥

यास्यसि शिवलोकं वै भवेः प्रमथनायकः । पितृलोकं गतान् पश्य पितृन्तव ह्यधःस्थितान् ॥१०१॥

तृप्तानुत्सारितान्दत्तैस्त्वत्तिलोदकरज्जुभिः । यत्र कुत्र मयि प्राप्ते संस्नान्ति धीयुता नराः ॥१०२॥

तेषां पूर्वकृतान् पापान् हरिष्यामि न संशयः ।

कोटित्रयार्धकोटीनि[५४] तीर्थानि मयि सन्ति वै ॥१०३॥

सर्वतीर्थमयी साक्षात्सकलेषु च पर्वसु । वाग्वती शिवगङ्गेति ब्रह्मसरस्वतीति वा ॥१०४॥

यो ब्रूयादनिशं तस्य नित्यं पापं हराम्यहम् । तथोत्तरप्रयागं स्यादत्र नः सङ्गमः शुभः ॥१०५॥

फलदः तीर्थकोटीनां कलौ प्राप्ते विशेषतः ।

---

नेमुनिले भन्नुभयो – हे विरूपाक्ष ! यस किसिमको त्यो पिशाचको स्तुति सुनेर दुई नदीको सङ्गमस्थलको पानीभित्रबाट भगवती तुरुन्त प्रकट हुनुभयो । कृपाले सम्पन्न भएकी भगवती वाग्वतीले मुसुक्क हाँसेर वर दिनका लागि त्यस पिशाचलाई भन्न लाग्नुभयो ॥९५-९६½॥

वाग्वतीले भन्नुभयो – हे ब्रह्मपिशाच ! तिमी आजदेखि ब्राह्मणश्रेष्ठ भयौ । मेरो जलमा भक्तिपूर्वक स्नान गरेको हुँदा तिम्रो शरीर पापबाट मुक्त भयो । सात जन्ममा गरेको पापबाट पनि तिमी मुक्त भयौ । त्यस्तै बोली, मन र शरीरले गरेका महापापबाट पैदा भएको हिलोबाट पनि तिमी मुक्त भएका छौ, यसमा शङ्का छैन । हे छोरा ! आजदेखि तिमी धेरै समयसम्म चिरञ्जीवी भए । मेरो अनुग्रहले गर्दा तिमी भगवान् शङ्करको सेवक भएर कैलासमा बस्न पाउनेछौ ॥९७-९९॥

हे बाबु ! आज पूर्णिमाको दिन कोटीश्वर भगवान्को पूजा गर । तिमी शिवलोकमा गएपछि प्रमथगणका नेता हुनेछौ । पितृलोकमा गएर तल बसेका पितृहरूलाई हेर । यिनीहरू तिमीले दिएका तिल र जलको डोरीले तृप्त भएर माथि आएका छन् । जुनसुकै ठाउँमा किन नहोस्, मेरो जलमा जुन बुद्धिमान् मानिसले स्नान गर्छ त्यसले अघि गरेका सम्पूर्ण पापहरू हरण गर्नेछु, यसमा शङ्का छैन ॥१००-१०२½॥

मसँग साढे तीन करोड तीर्थहरू छन् । त्यसैले म सम्पूर्ण पर्वहरूमा सर्वतीर्थमय भएर रहन्छु । जसले सधैँ वाग्वती, शिवगङ्गा अथवा ब्रह्मसरस्वती भनेर निरन्तर जप्ने गर्छ म त्यसका सबै पाप हरण गर्छु । यहाँ हामीहरूको सङ्गम भएको उत्तरप्रयाग छ । विशेष गरी कलियुगमा करोडौँ तीर्थमा गरेको धर्मकर्मको फल यसै तीर्थमा प्राप्त हुन्छ ॥१००-१०५½॥

---

५४. चिरञ्जीव्यादिपुत्र, इति न.सं.पु.पाठः ।

ऋषिरुवाच

इत्युक्त्वान्तर्दधे विप्रं वाग्वतीसङ्गमे जले ॥१०६॥

दर्शयित्वा स्वरूपं तत् त्रिगङ्गारूपिणी शिवा। सोऽप्यगमत्पिशाचोऽसौ पुण्यभूमिं महास्थलीम् ॥१०७॥

आरुरोह गिरिं भक्त्या कोटीश्वरेति संवदन्। प्रणम्य दण्डवद् भूमौ व्यक्तरूपाञ्च वाग्वतीम् ॥१०८॥

तत्पूर्णिमादिने भक्त्या चैतल्लिङ्गं समार्चयत्[५५]। आययुः प्रमथाश्चाऽत्र प्रवर्षन्तः सुमानि च[५६] ॥१०९॥

तस्मिन्विनिद्रिते विप्रे यानहस्ता महानिशि। तमास्थाय विमाने ते निन्युः शिवपुरं शुभम् ॥११०॥

सदेहं पूजयन्तो हि रुद्रकन्याप्रसेवितम्[५७]। रुद्रस्यानुचरः सोऽपि पिशाचोऽभून्निरन्तरम् ॥१११॥

स चोत्तरप्रयागस्य प्रसादाद्धि न संशयः। स्नानकाले नरो भक्त्या यः पठेद्वाग्वतीस्तवम् ॥११२॥

वाग्वत्या स्नानजं पुण्यं प्राप्नोति नित्यपाठकः। सङ्ग्रामे जयमाप्नोति ग्रहपीडा विनश्यति ॥११३॥

कान्तां पुत्रं धनञ्चायुर्यशः कीर्तिं च प्राप्नुयात्[५८]। पितृस्त्रीबालगोविप्रवधपापैश्च मुच्यते ॥११४॥

सुवर्णस्तेयमिथ्योक्ताभक्ष्यस्वकृतकिल्विषैः। मद्यपानपरद्रव्यागम्यागमनकिल्विषैः ॥११५॥

मुखदोषोद्भवैः पापैर्मुच्यते स न संशयः। न तूत्तरप्रयागेन समं तीर्थञ्च विद्यते ॥११६॥

---

नेमुनिले भन्नुभयो – यति भनेर वाग्वतीको सङ्गममा रहेकी त्रिगङ्गारूपधारिणी भगवती शिवा आफ्ना तीनै स्वरूप देखाउँदै अन्तर्धान हुनुभयो। ती पिशाच पनि भक्तिपूर्वक कोटीश्वरको नाम लिँदै पवित्र भूमि भएको त्यस आश्रममा गए ॥१०६-१०७॥

व्यक्त रूप भएकी वाग्वतीलाई भूमिमा पसेर दण्डवत् प्रणाम गर्दै त्यसै पूर्णिमाको दिन ती पिशाचले यस लिङ्गको पूजा गरे। राति जाग्राम गरेर ती पिशाचरूप ब्राह्मण बसिरहेका थिए। त्यसैबेला विमान लिएर फूल वर्षा गर्दै यस ठाउँमा प्रमथ आदि शिवगणहरू आए। तिनलाई उनीहरूले विमानमा राखेर सम्मानपूर्वक सशरीर कल्याणदायक शिवपुरमा लगे। रुद्रकन्याहरूले उनको सेवा गरेका थिए। ती पिशाच पनि उत्तरप्रयागको कृपाले गर्दा सधैँ शिवजीको सेवक बन्न पुगे, यसमा शङ्का छैन ॥१०८-१११॥

स्नान गर्ने समयमा जसले सधैँ वाग्वतीको स्तुतिपाठ गर्छ त्यसले वाग्वतीमा स्नान गरेको पुण्य पाउँछ॥ वाग्वतीको स्तुतिपाठ गर्ने व्यक्तिले युद्धमा विजय पाउँछ। उसका ग्रहदशाहरू नाश हुन्छन्, पत्नी, पुत्र, पुत्री, धन, आयु, यश तथा कीर्ति सधैँ उसलाई उपलब्ध हुन्छ। त्यो व्यक्ति पितृ, स्त्री, बालक, गाई र ब्राह्मण मारेको पापबाट मुक्त हुन्छ। त्यस्तै सुन चोरेको, झूटो बोलेको, अभक्ष्य खाएको र आफूले गरेका अन्य पापबाट पनि मुक्त हुन्छ। मदिरासेवन, परद्रव्यको अपहरण, अगम्यामाथिको गमन र मुखको दोषबाट भएका पापहरूबाट पनि मुक्त हुन्छ, यसमा शङ्का छैन ॥११२-११६½॥

---

५५. चैतल्लिङ्गञ्च समर्चितः, इति न.सं.पु.पाठः।
५६. वर्षयन्पुष्पसन्ततिम्, इति न.सं.पु.पाठः।
५७. सदेहं पूजयन् गीतै रुद्रकन्याप्रसेवयन्, इति न.सं.पु.पाठः।
५८. लभेत्सदा, इति न.सं.पु.पाठः।

त्रिषु लोकेषु सिद्धार्य विशेषेण कलौ ऋतम्। भूयो गच्छ विरूपाक्ष ! यत्र बाणेश्वरो विभुः ॥११७॥
धनुषाञ्च शतं धीमन् ततो दूरे समुत्तरम्।
शृण्वन्ति येऽखिलजनमनोमोदमध्यायमेतद्
भक्त्या सकृत् त्वघहरमुदीचीप्रयागस्य वृत्तम्।
पापैर्नैकैः स्वतनुविहितैः पूर्वजन्मार्जितैश्च
नो लिप्यन्ते मखजनितफलं पुण्यपुञ्जाँल्लभन्ते ॥११८॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां रुद्रधाराकोटीश्वरयोर्माहात्म्यं नाम सप्तचत्वारिंशदुत्तरशततमोऽध्यायः ॥१४७॥

---

हे विरूपाक्ष ! विशेष गरी कलियुगमा उत्तरप्रयागजस्तो अर्को कुनै ठूलो तीर्थ तीनै लोकमा छैन, यो कुरा सत्य हो। त्यसपछि हे विरूपाक्ष ! त्यहाँबाट सय धनुष उत्तर जाऊ। त्यहाँ बाणेश्वर भगवान् बस्नुभएको छ ॥११३-११७½॥

हे विरूपाक्ष ! जसले यस अध्यायमा वर्णन गरिएको सम्पूर्ण मानिसलाई आनन्द दिने पापनाशक उत्तरप्रयागको माहात्म्य एक पटकमात्रै भए पनि भक्तिपूर्वक सुन्छन्, तिनीहरूले आफ्नो शरीर र पूर्वजन्ममा गरेका पापबाट मुक्त भएर वाजपेय यज्ञ गरेको फल पाउँछन् ॥११८॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा रुद्रधारातीर्थ र कोटीश्वरको माहात्म्यनामक एकसय सत्चालिसौं अध्याय पूरा भयो।

# अष्टचत्वारिंशदुत्तरशततमोऽध्यायः

बाणेश्वरशिवलिङ्गमाहात्म्यम्

स्कन्द उवाच

भूयोऽगमद्विरूपाक्षो मुनिना सह कुम्भज । बाणेश्वरो हि यत्रास्ते पञ्चम्यां राधके सिते ॥१॥
स्नात्वा स बाणगङ्गायां बाणेश्वरमपूपुजत् । अपृच्छन्नेमुनिं रात्रौ लिङ्गप्रशंसनं पुनः ॥२॥
आकर्ण्य तद्वचः शीघ्रं तन्माहात्म्यं घटोद्भव । व्याजहार मुनिस्तस्मै स्वभक्ताय[1] महानिशि ॥३॥

ऋषिरुवाच

बाणर्षिणा द्विजैः साकं लिङ्गं संस्थापितं पुरा । अस्मिन्पाशुपते क्षेत्रे तस्माद्बाणेश्वरः श्रुतः ॥४॥
कश्चिन्म्लेच्छश्च कालान्ते चैतल्लिङ्गप्रसादतः । रुद्रस्याऽनुचरो मुक्तो ह्यभवद्वच्म्यहं शृणु ॥५॥
आसीत्पुरा किरातश्च पिङ्गकेश इति श्रुतः । अवात्सीत्खलु चाऽत्रैव ह्याजन्म स[2] धनुर्धरः ॥६॥
नित्यं स मृगयाजीवी भुनक्ति स्म[3] मृगामिषम् । निवेद्य स च लिङ्गाय भक्त्या स्वैरन्वयैः सह[4] ॥७॥
अवात्सीदेवमत्रैव सम्पूर्णं जीवनं ह्नदा[5] । शिव शिवेति मन्त्रं च जपन् पुत्रकलत्रकैः[6] ॥८॥
रतिञ्चकार स म्लेच्छो दिवारात्रौ द्विधा त्रिधा । अग्रहीद्राजयक्ष्मा तं तद्दोषेण विरूपदृक् ॥९॥
स्वल्पायुरभवन् म्लेच्छो महारोगी व्यथार्दितः[7] । दिने दिने ह्यभूत्क्षीणः कालञ्च प्राप्तवान् ध्रुवम् ॥१०॥
मकरस्थे रवौ म्लेच्छः सङ्क्रान्त्यां शङ्करान्तिके । आह्वयन्[8] शिव रुद्रेति पञ्चत्वं प्राप्तवान् दिने ॥११॥

---

## अध्याय - १४८

### बाणेश्वर शिवलिङ्गको माहात्म्य

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! फेरि विरूपाक्ष नेमुनिलाई साथमा लिएर वैशाखशुक्ल पञ्चमीका दिन जहाँ बाणेश्वर भगवान् बस्नुभएको थियो, त्यसै ठाउँमा गए । उनले बाणगङ्गामा स्नान गरेर बाणेश्वर भगवान्को पूजा गरे । फेरि राति उनले नेमुनिसित त्यस लिङ्गको माहात्म्य सोधे । हे अगस्त्य मुनि ! उनको त्यो कुरा सुनेर नेमुनिले राति आफ्ना भक्त विरूपाक्षलाई यस लिङ्गको महत्त्व बताए ॥१–३॥

नेमुनिले भन्नुभयो – अघि बाण नाम गरेका ब्रह्मर्षिले यस पाशुपतक्षेत्रमा यो लिङ्ग स्थापना गरेका थिए । त्यसैले यसको नाम बाणेश्वर रह्यो । कालान्तरमा गएर यसै लिङ्गको प्रभावले गर्दा कुनै म्लेच्छ मुक्त भएर शिवजीको सेवक बन्न पुगेको थियो, त्यो कुरा म बताउँछु, सुन ॥४–५॥

हे विरूपाक्ष ! अघि पिङ्गकेश नाम गरेको एउटा किरात थियो । त्यो धनुर्धारी किरात जन्मभर यसै ठाउँमा बसेको थियो । ऊ सधैँ शिकार खेल्थ्यो । भक्तिपूर्वक त्यस लिङ्गमा समर्पण गरेर सपरिवार मृगको मासु खान्थ्यो । यसरी त्यो म्लेच्छ पत्नी र पुत्रहरूका साथमा शिव ! शिव ! भन्दै जन्मभर यसै ठाउँमा बस्यो । हे विरूपाक्ष ! त्यस म्लेच्छले दिन तथा रातमा गरेर दुई पटक, तीन पटकसम्म रतिक्रीडा गर्‍यो । त्यसै दोषले गर्दा उसलाई क्षयरोगले समात्यो । त्यो महारोगी म्लेच्छ रोगले पीडित भएर स्वल्पायु बन्न पुग्यो । ऊ दिनदिनै दुब्लाउँदै गयो, त्यसको काल आइपुग्यो । सूर्य मकरराशिमा प्रवेश गरेको सङ्क्रान्तिका दिन त्यस म्लेच्छले शिवलिङ्गको नजिकै मध्याह्नमा शिव ! रुद्र ! भन्दै प्राण छोड्यो ॥६–११॥

---

१. स्वभक्तिने, इति न.सं.पु.पाठः ।
२. आजन्मानि, इति न.सं.पु.पाठः ।
३. सदाभोजी, इति न.सं.पु.पाठः ।
४. समन्वयैः सह, इति न.सं.पु.पाठः ।
५. एवमासीत्समत्रैव चाजन्मान्तं स सन्ततम्, इति न.सं.पु.पाठः ।
६. शिवशिवेति च म्लेच्छो भार्यापुत्रैः समं तदा, इति न.सं.पु.पाठः ।
७. रुजार्दितः, इति न.सं.पु.पाठः ।
८. मध्याह्ने, इति न.सं.पु.पाठः ।

प्रमथास्त्वरितञ्चाऽत्र समाययुः शिवाज्ञया। प्रवर्षन्तश्च पुष्पाणि वादयन्तश्च वाद्यकम्[९] ॥१२॥
तमास्थायाशु ते याने निन्युः शिवपुरं परम्। गीतवाद्यमहोल्लासै रुद्रकन्याप्रसेवितम् ॥१३॥
अद्यापि वर्तते[१०] म्लेच्छो रुद्रस्याऽनुचरोऽनिशम्। पिङ्गकेश इति ख्यातः प्रमथानां गरिष्ठकः ॥१४।
भूयो गच्छ विरूपाक्ष ! यत्र ज्ञानेश्वरो विभुः। धनुषाञ्च सहस्राणामतो दूरे व्यवस्थितः ॥१५॥
अध्यायं ये प्रवरचरितं भक्तिभावेन प्राज्ञाः संशृण्वन्तीश्वरवरकृपाख्यानमाहात्म्यपूतम्।
ते प्राप्स्यन्तीश्वरवरपुरं किल्विषैस्त्यक्तदेहाः स्थास्यन्तैशे प्रवरभवने वर्षमेकं हि यावत् ॥१६॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां
बाणेश्वरमाहात्म्यं नाम अष्टचत्वारिंशदुत्तरशततमोऽध्यायः ॥१४८॥

---

शिवजीको निर्देशन अनुसार प्रमथ आदि गण फूल वर्षा गर्दै, बाजा बजाउँदै त्यहाँ आए। तिनीहरूले गीत गाउँदै, बाजा बजाउँदै ठूलो उत्सवका साथ त्यसलाई यानमा राखेर शिवपुरमा लगे। त्यसबेला रुद्रकन्याले पनि त्यसको सेवा गरेका थिए। आज पनि पिङ्गकेश नाम गरेको त्यो म्लेच्छ प्रमथगणहरूको नाइके भएर सधैँ शिवजीको सेवक बनी बसेको छ ॥१२-१४॥

हे विरूपाक्ष ! फेरि तिमी हजार धनुष टाढा रहेको क्षेत्र जहाँ ज्ञानेश्वर भगवान् हुनुहुन्छ, त्यस ठाउँमा जाऊ ॥१५॥

जुन विद्वान्हरूले महादेव बाणेश्वरको उत्तम कथाले युक्त भएको यो पवित्र अध्याय प्रतिदिन सुन्छन्, ती व्यक्तिहरू पापबाट मुक्त भई सर्वशक्तिमान् शिवजीको लोकमा पुग्छन्। एक वर्षसम्म शिवजीको उत्तम भवनमा बस्न पाउँछन् ॥१६॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा बाणेश्वरको माहात्म्यनामक
एकसय अट्चालिसौँ अध्याय पूरा भयो।

---

९. वर्षयन् पुष्पवर्षाणि नानावाद्यानि वादयन्, इति न.सं.पु.पाठः। १०. सोऽभवन्, इति न.सं.पु.पाठः।

# ऊनपञ्चाशदुत्तरशततमोऽध्यायः

## मयूरतीर्थज्ञानेश्वरशिवलिङ्गयोर्माहात्म्यम्

स्कन्द उवाच

ततोऽगमद्विरूपाक्षो यत्र ज्ञानेश्वरो विभुः। राधशुक्लस्य षष्ठ्याञ्च मुनिना तेन वै समम् ॥१॥
बर्हितीर्थे मुदा स्नात्वा ज्ञानेश्वरमपूपुजत्। ततोऽपृच्छन्मुनिं रात्रौ माहात्म्यं तीर्थलिङ्गयोः ॥२॥
आकर्ण्य तद्वचोऽगस्त्य ! सिद्धर्षिर्निशि सेविने[1]। व्याजहार शुभं वाक्यं माहात्म्यञ्च तयोः पुनः ॥३॥

ऋषिरुवाच

देवैराराधितः पूर्वं सेनानीप्रमुखैरिह[2]। दैत्यार्दितैश्च तैः साकं युद्धाय शङ्करो विभुः[3] ॥४॥
माघकृष्णचतुर्दश्यामेतल्लिङ्गसमुद्भवम्। सम्प्रेक्ष्य मुमुहुर्देवा महालिङ्गं महाद्भुतम् ॥५॥
आनर्चुर्विधिवल्लिङ्गं देवाः स्कन्दपुरोगमाः। आविर्भूतस्ततो लिङ्गान्महादेवो मुदा पुनः ॥६॥
व्याजहार वचः शीघ्रं देवेभ्यो व्यक्तविग्रहः। सेनानीञ्च समादृत्य पूर्वं दत्त्वा वरं तदा ॥७॥

रुद्र उवाच

जेष्ठिलायामतः पूर्वं स्नानं कुरुथ साम्प्रतम्। ततो भविष्यति जयस्त्रिदशानां न संशयः ॥८॥

ऋषिरुवाच

इत्यादेशं समादाय सस्नुः तस्यां सुरा मुदा। कुशोदकैश्च सङ्कल्प्य देवानां[4] जयलब्धये ॥९॥
देवसैन्यं ततः प्रेक्ष्य मयूरोऽनरीनृत्यत[5]। अद्यैव सङ्गरेऽस्माकं भविष्यति जयो ब्रुवन्[6] ॥१०॥

---

## अध्याय - १४९

### मयूरतीर्थ र ज्ञानेश्वर शिवलिङ्गको महिमा

कार्तिक स्वामीले भन्नुभयो – त्यसपछि विरूपाक्ष वैशाखशुक्ल षष्ठीका दिन ती नेमुनिलाई साथमा लिएर जहाँ ज्ञानेश्वर बस्नुहुन्थ्यो, त्यसै ठाउँमा गए। मयूरतीर्थमा उनले प्रसन्न भएर स्नान गरे, अनि ज्ञानेश्वर भगवान्को पूजा गरे। त्यसपछि राति उनले नेमुनिसित त्यस तीर्थ र लिङ्गको माहात्म्य सोधे। हे अगस्त्य मुनि ! उनको त्यो कुरा सुनेर सिद्धऋषि नेमुनिले राति आफ्ना भक्त विरूपाक्षलाई त्यस तीर्थ र लिङ्गको कल्याणमय माहात्म्य फेरि बताए ॥१-३॥

नेमुनिले भन्नुभयो – अघि स्कन्द आदि देवताहरूले राक्षसहरूबाट पीडित भएर युद्धका लागि यसै स्थलमा भगवान् शङ्करको आराधना गरेका थिए। माघकृष्ण चतुर्दशीका दिन यो लिङ्ग पैदा भएको थियो। यो आश्चर्यजनक महालिङ्गलाई देखेर देवताहरू मोहित भएका थिए। कार्तिक स्वामी आदि देवताहरूले यस लिङ्गको विधिपूर्वक पूजा गरे। त्यसपछि यस लिङ्गबाट प्रसन्न हुँदै भगवान् शङ्कर प्रादुर्भाव हुनुभयो। प्रकट हुनुभएका भगवान् शङ्करले कार्तिक स्वामी र देवताहरूको आदर गर्दै वर दिनुभयो र तुरुन्त उनीहरूलाई भन्नुभयो ॥४-७॥

भगवान् शङ्करले भन्नुभयो – अब पहिले ज्येष्ठिला नदीमा स्नान गर। त्यसपछि देवताहरूको विजय हुन्छ, यसमा शङ्का छैन ॥८॥

नेमुनिले भन्नुभयो – यस किसिमको आदेश पाएपछि कुशजल लिएर आफ्नो विजय प्राप्तिका निमित्त सङ्कल्प गर्दै देवताहरूले त्यस नदीमा गएर आनन्दसित स्नान गरे। देवताहरूको सेनालाई देखेर आज नै युद्धमा देवताहरूको विजय हुन्छ भने झैं गरी मयूर पनि नाच्यो ॥९-१०॥

---

१. भक्तिने, इति न.सं.पु.पाठः।
२. स्कन्दमुखैरमुत्र वै, इति न.सं.पु.पाठः।
३. दितिसुतार्दमानैस्तैः समं युद्धाय शङ्करम्, इति न.सं.पु.पाठः।
४. आत्मनः, इति न.सं.पु.पाठः।
५. मयूरोऽसौ नरीनृतत्, इति न.सं.पु.पाठः।
६. अद्यैव नो भविष्यन्ति युद्धे जय इति ब्रुवन्, इति न.सं.पु.पाठः।

ततः प्रभृति सिद्धार्य ! सर्वलोकैरिति श्रुतम्। मयूरतीर्थमित्याख्यं सर्वदा विजयप्रदम्[७] ॥११॥
कश्चिन्मुक्तः पुरा चाऽत्र कालान्ते हि द्विजात्मकः। अस्मिन्तीर्थे जलस्नानादेतल्लिङ्गप्रसादतः ॥१२॥
आसीद्विप्र ! मुनेः पुत्रो मूको नाम इति श्रुतः। पशुपतिपुरे चाऽत्र विकटस्य महात्मनः ॥१३॥
एतत्तीर्थे मुनिः पुत्रं स मूकं स्नपनेच्छुकः[८]। सङ्कल्प्य विधिवद् भक्त्या क्षुद्रधीरेकपुत्रकः ॥१४॥
ज्येष्ठशुक्लनवम्यां स वसन् तीर्थे मुनिर्निशि। दशम्यां ज्येष्ठनक्षत्रे सुतमस्नापयत् तटे[९] ॥१५॥
ततश्च स्नानमात्रेण स बालकस्तदा पुनः। व्याचष्ट वचनं मूकः पितरं[१०] चाऽभिमोदयन् ॥१६॥
पितस्त्वं क्षुधयात्यन्तपीडितायाऽधुना विभो। देह्यन्नं सहसा मह्यं यस्माद् जीवामि निश्चितम्[११] ॥१७॥
इत्याकर्ण्याशु मूकस्य पुत्रस्य वचनं मुनिः। प्रमुमोद भृशं तत्र निःस्वो लब्धनिधिर्यथा ॥१८॥
सङ्गृह्य पुत्रहस्तं स चाऽत्रानीय मुदा मुनिः। पञ्चोपचारकैर्भक्त्या चैतल्लिङ्गमसेवत ॥१९॥
अवात्सीत्तन्निशायां वै सपुत्रो मुनिसत्तमः। ततो ज्ञानं ददौ रुद्रो बालकाय स्वसेविने[१२] ॥२०॥
असेवत तदादि स चैतल्लिङ्गं निरन्तरम्। अभूद्विचक्षणो विप्रः पद्येनैवावदत्सदा ॥२१॥
चरणेन सदा प्रोक्तं विप्रेण सर्वसन्निधौ[१३]। तस्माल्लोकैः शिशुः प्रोक्तः सोऽयं वै चरणस्थितिः[१४] ॥२२॥
चरणेन यतो लिङ्गमेतत्प्रसेवितं सदा। तस्माल्लिङ्गमिदं प्रोक्तंलोकैश्च चरणेश्वरम्[१५] ॥२३॥

---

हे विरूपाक्ष ! त्यसै समयदेखि सबै मानिसहरूले यसलाई मयूरतीर्थ भने। देवताहरू युद्धका निमित्त स्वर्गतिर लागे। अघि कुनै ब्राह्मण यस तीर्थको जलमा स्नान गरेको पुण्य र लिङ्गको अनुग्रहले गर्दा मरेर यसै ठाउँमा मुक्त भएको थियो। हे विरूपाक्ष ! यसै पशुपतिपुरमा विकट नाम गरेको महात्मा मुनिको एउटा मूक नाम गरेको छोरो पैदा भएको थियो। एउटै छोरा पाएका ती मुनिले मलाई खिन्न बनाउँदै यसै तीर्थमा ल्याएर त्यस मूक नाम गरेको छोरालाई सङ्कल्प गरेर विधिपूर्वक सभक्ति स्नान गराए। ज्येष्ठशुक्ल नवमीका दिन तीर्थमा बसेर ती ऋषिले ज्येष्ठा नक्षत्रले युक्त भएको दशमीका दिन छोरालाई स्नान गराएका थिए। स्नान गर्नेबित्तिकै मूक नाम गरेको त्यस बालकको बोली फुट्यो र उसले आफ्नो बाबुसँग प्रेमपूर्वक भन्यो ॥११-१६॥

हे बुबा ! भोकले अत्यन्त पीडित भएको मलाई तपाईं तुरुन्त खानेकुरा दिनुहोस्, त्यो भएपछि मात्र म शरीरका प्राणहरूलाई धारण गर्न सक्छु। गरीब मान्छेले खानी पाउँदा जसरी प्रसन्न हुन्छ, त्यसरी नै मूक अर्थात् लाटो छोराको यो भनाइ सुनेर ती ऋषि अत्यन्त हर्षित भए। छोराको हात समातेर ती मुनिले यस लिङ्गको नजिकै ल्याई पञ्चोपचार विधिले भक्तिपूर्वक आराधना गराए। ती मुनिले छोरालाई राति त्यसै ठाउँमा राखे। त्यसपछि भगवान् शङ्करले पनि आफ्ना भक्त ती बालकलाई ज्ञान दिनुभयो ॥१७-२०॥

त्यसै दिनदेखि उनले यस लिङ्गको निरन्तर आराधना गरे। ती ब्राह्मण विद्वान् भए, पद्यमा नै कुरा गर्न सक्ने भए। ती ब्राह्मणले सबैको अगाडि छन्दोबद्ध श्लोकको एक पाउबाट मात्रै बोल्न लागेको हुँदा सबैले ती ब्राह्मणलाई चरण भन्ने नाम राखे किनभने चरण नाम गरेका ब्राह्मणले यस लिङ्गको सधैं सेवा गरेका थिए, त्यसैले मानिसहरूले यस लिङ्गलाई चरणेश्वर भने ॥२१-२३॥

---

७. नाके युद्धं ययुः सुराः, इति न.सं.पु.पाठः।
८. स्नापयेत्तदा, इति न.सं.पु.पाठः।
९. जेष्ठर्क्षसंयुतायां वै दशम्यां स्नापयत् सुतम्, इति न.सं.पु.पाठः।
१०. स्वपित्रे, इति न.सं.पु.पाठः।
११. यस्माद्धार्ये ह्यसूत्तनोः, इति न.सं.पु.पाठः।
१२. स्वभक्तिने, इति न.सं.पु.पाठः।
१३. सन्तताग्रतः, इति न.सं.पु.पाठः।
१४. तस्माल्लोकैस्ततस्तस्मै प्रोक्तं वै चरणस्थितिः, इति न.सं.पु.पाठः।
१५. तस्माल्लोकैर्द्विज प्रोक्तमेतस्मै चरणेश्वरः, इति न.सं.पु.पाठः।

चरणो नाम महात्मा लोकवन्द्यो ह्यभून्मुनिः। देशिकः सर्वविद्यासु सर्वसत्त्वदयाकरः ॥२४॥
चतुर्थञ्च वयः प्राप्य रुद्रमन्त्रं जजाप सः। दशलक्षं हृदा भक्त्या चाऽभूल्लब्धवरो हरात् ॥२५॥
प्रमथास्तमिहागत्य चादध्युस्तद्विमानके। ज्येष्ठे सितदशम्यां तत्त्रिवृत्ते मानपूर्वकम्[१६] ॥२६॥
निन्युः शिवपुरं विप्रं तेऽम्बराद्यानगं मुदा। वाद्यगीतमहोल्लासै रुद्रकन्याप्रसेवितम् ॥२७॥
भूयो गच्छ द्विजश्रेष्ठ ! यत्रास्ते पर्वतेश्वरः। पशुपतेरुदीच्यां हि धनुषां त्रिसहस्रके ॥२८॥
शृण्वन्तीदं मुखजडहरं ये माहात्म्यं हि मर्त्या अध्यायेऽस्मिन्वरपशुपतेर्बर्हिनाम्ना हि लिङ्गम्।
ते चाभूवन्मुखजडदृढत्यक्तदेहाभिरामास्तत्र स्नानात्परशिवपुरं यान्ति निष्पापदेहाः ॥२९॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां
मयूरतीर्थज्ञानेश्वरयोर्माहात्म्यं नाम ऊनपञ्चाशदुत्तरशततमोऽध्यायः ॥१४९॥

---

चरण नाम गरेका ती महात्मा ती मुनि संसारका पूजनीय भए। उनी सम्पूर्ण विद्याका अधिकारी बने। उनी सम्पूर्ण प्राणीहरूमाथि दया गर्दथे। अन्तिम उमेरमा पुगेपछि उनले भक्तिपूर्वक भगवान् शङ्करको दश लाख मन्त्र जपेर शिवजीबाट वरदान पाए। शिवजीका प्रमथ आदि पार्षदहरूले आएर ज्येष्ठशुक्ल दशमीका दिन तीन घेरा भएको शिवविमानमा उनलाई बडो सम्मानका साथ राखे। उनीहरूले यानमा राखेका ती ब्राह्मणलाई आकाशमार्गबाट बाजा बजाउँदै ठूलो उत्सवका साथ शिवलोक लगे। रुद्रकन्याले उनको सेवा गरेका थिए ॥२४-२७॥

हे विरूपाक्ष ! फेरि तिमी तीन हजार धनु उत्तरतिर रहेको पशुपतिको क्षेत्रमा जाऊ। त्यहाँ पर्वतेश्वर भगवान् बस्नुभएको छ ॥२८॥

यस अध्यायमा वर्णन भएको मूर्खतालाई नाश गर्ने पशुपतिसम्बन्धी मयूरतीर्थको माहात्म्य जसले सुन्छन्, ती मानिसहरू मूर्खताबाट मुक्त तथा निर्मल हुन्छन्। त्यस तीर्थमा स्नान गर्नाले पापबाट मुक्त भएर उत्तम शिवजीको धाममा जान्छन् ॥२९॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा मयूरतीर्थ र ज्ञानेश्वरको माहात्म्यनामक
एकसय उनन्पचासौं अध्याय पूरा भयो।

---

१६. चाद्रयन् बहु, इति न.सं.पु.पाठः।

# पञ्चाशदुत्तरशततमोऽध्यायः

ज्ञानकूपतीर्थपर्वतेश्वरशिवलिङ्गयोर्माहात्म्यम् ॥

स्कन्द उवाच

ततोऽगमद्विरूपाक्षो यत्राऽस्ते पर्वतेश्वरः। एकादश्यां समं तेन राधशुक्लस्य वै मुदा ॥१॥
ज्ञानकूपे ह्रदा स्नात्वा पर्वतेशमपूपुजत्। तन्माहात्म्यं मुनिं रात्रौ पृच्छति स्म द्विजोत्तमः ॥२॥
आकर्ण्य वचनं तस्य भक्त्योदितं मनोहरम्[1]। व्याजहार मुनिश्चाऽपि तन्माहात्म्यं द्विजन्मने ॥३॥

नेमुनिरुवाच

यदा हिमालयेनार्य ध्यातः[2] पशुपतिर्भृशम्। तदैव स्थापितं लिङ्गमेतद्धिमवताऽत्र वै ॥४॥
तदादि भुवि विख्यातो लोके च पर्वतेश्वरः[3]। शृणु वच्मि च माहात्म्यमेतल्लिङ्गस्य सिद्धिदम्[4] ॥५॥
स्थूलपाद इति ख्यात आसीत्कश्चिच्च गुह्यकः। स्वच्छन्दगमनश्चाऽङ्ग ! स योजनपदो भृशम् ॥६॥
सत्ये त्विहाययौ सोऽपि कुबेरेण समं मुदा[5]। वाग्वत्यामत्र वै स्नातुं गुह्यकैश्च निषेवितः[6] ॥७॥
श्रावणीपूर्णिमायान्तु वाग्वत्यामत्र भक्तितः। मुदा सस्नौ विरूपाक्ष ! स्वतीर्थे गुह्यकेश्वरः ॥८॥
एतत्कूपञ्च सम्प्रेक्ष्य स्थूलपादः प्रहर्षितः। अज्ञोऽसावुत्पपाताशु कूपेऽस्मिन् ज्ञानदे भृशम् ॥९॥
ज्ञानवानभवत्सोऽपि चाऽस्मिञ्जले निमज्जनात्। कूपादुत्तीर्य स शीघ्रं स्थूलपाद इहाऽव्रजत् ॥१०॥
कृत्वात्मानञ्च धिक्कारमस्थिरञ्चाऽपि जीवनम्[7]। देहेनानेन किं भद्रं साध्यते खलु मे हितम् ॥११॥
ज्ञानवान्स्थूलपादोऽसौ चैतल्लिङ्गमसेवत। अलकां खलु सन्त्यज्य प्रियां प्रियं प्रभुं तथा ॥१२॥

---

## अध्याय – १५०

ज्ञानकूपतीर्थ र पर्वतेश्वर शिवलिङ्गको माहात्म्य

कार्तिक स्वामीले भन्नुभयो – त्यसपछि विरूपाक्ष वैशाखशुक्ल एकादशीका दिन नेमुनिलाई साथमा लिएर प्रसन्न हुँदै जहाँ पर्वतेश्वर रहनुभएको थियो, त्यसै ठाउँमा गए। ज्ञानकूपमा स्नान गरेर प्रसन्न हुँदै उनले पर्वतेश्वर भगवान्को पूजा गरे। ब्राह्मणश्रेष्ठ ती विरूपाक्षले राति नेमुनिसित त्यस लिङ्गको माहात्म्य सोधे। भक्तिपूर्वक भनेको विरूपाक्षको भनाइलाई सुनेर ऋषिले पनि ती ब्राह्मणलाई त्यस लिङ्गको माहात्म्य बताए ॥१–३॥

नेमुनिले भन्नुभयो – जुन बेला हिमालयले भगवान् शङ्करको तपस्या गरेका थिए, त्यसैबेला हिमालयले यो लिङ्ग यहाँ स्थापना गरेका हुन्। हे विरूपाक्ष ! त्यसै समयदेखि दुनियाँले उहाँलाई पर्वतेश्वर भने। यस लिङ्गको माहात्म्य पनि म बताउँछु, सुन। अघि स्थूलपाद नाम गरेको कुनै यक्ष थियो। एक योजन लामा खुट्टा भएको त्यो यक्ष नित्य स्वच्छन्द भएर हिँड्दथ्यो। सत्ययुगमा त्यो यक्ष यक्षद्वारा सेवित कुबेरसँगसँगै स्नान गर्न यस वाग्वती नदीमा आएको ॥४–७॥

हे विरूपाक्ष ! श्रावणपूर्णिमाको दिन ज्ञानी त्यस स्थूलपादले भक्तिपूर्वक वाग्वतीका तटमा रहेको कूपतीर्थमा स्नान गऱ्यो। यो कुवा देखेर मूर्ख स्थूलपाद ज्यादै प्रसन्न भयो। अनि ज्ञानदायक त्यस कुवामा तुरुन्त जोडले हामफाल्यो। कुवाको जलमा स्नान गरेको हुँदा त्यो पनि ज्ञानी भयो। स्थूलपाद कुवाबाट निस्किएर तुरुन्त यहाँ आयो। यो जीवनलाई अस्थिर ठान्दै उसले आफैँलाई धिक्कार दियो। यस शरीरबाट कसको के कल्याण हुन्छ ? मैले के कसैको हितमा के गर्न सक्छु ? यसरी भनेर उसले चिन्तन गऱ्यो अलकानगरी, पत्नी र प्यारा स्वामीलाई समेत त्याग गरेर ज्ञानी स्थूलपादले यस लिङ्गको सेवा गर्न थाल्यो ॥८–१२॥

---

१. च तस्य च, इति न.सं.पु.पाठः।
२. तप्तः, इति न.सं.पु.पाठः।
३. तदादिशति विख्यातो लोकैश्च पर्वतेश्वरः, इति न.सं.पु.पाठः।
४. सिद्धभाक्, इति न.सं.पु.पाठः।
५. ययुः, इति न.सं.पु.पाठः।
६. गुह्यकसेवितेन च, इति न.सं.पु.पाठः।
७. धिक्कारमित्यस्थिरञ्च जीवनम्, इति न.सं.पु.पाठः।

ज्ञानकूपोद्धृतैस्तोयैर्नानापुष्पोच्चयैर्मुदा। नित्यमुपासते लिङ्गं पर्वतेश ! वदन्निति ॥१३॥
माघकृष्णचतुर्दश्यां पञ्चत्वं प्राप्तवान्निशि। भवामि तव दासोऽहं स्थूलपाद इति ब्रुवन् ॥१४॥
वर्षन्तः पुष्पगुच्छानि[८] यानहस्तास्त्विहाययुः। रुद्रगणा मुदा तस्मै वदन्तो साधु साध्विति ॥१५॥
तमास्थाय गणा याने निन्युः शिवपुरं महत्। उद्धूयमाना चार्द्रैश्च चामरैः किङ्करोद्धृतैः ॥१६॥
अद्यापि च भवेत्सोऽपि रुद्रस्याऽनुचरो बली। योजनपाद इत्याख्यो देवासुरैः प्रमाणितः ॥१७॥
अतो गच्छ विरूपाक्ष ! धनुषां हि चतुःशते। जलमध्ये दिशि प्राच्यां यत्रास्ते हि जलेश्वरः ॥१८॥

अध्यायेऽस्मिन् हिमगिरिपतेर्यो महत्त्वं शृणोति
ज्ञानाख्ये यत्प्रयतजलजे स्नानतः सोऽपि कूपे।
प्राप्यार्यस्तत्फलमनुमितं गच्छति स्थाणुलोकं
ज्ञानी त्यक्त्वा कठिनकलुषं ज्ञानशत्रूद्भवं वै ॥१९॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां
ज्ञानकूपतीर्थपर्वतेश्वरयोर्माहात्म्यं नाम पञ्चाशदुत्तरशततमोऽध्यायः ॥१५०॥

---

हे पर्वतेश्वर ! भन्दै ज्ञानकूपबाट निकालिएको जल र विभिन्न किसिमका फूलहरूले प्रसन्न हुँदै उसले यस लिङ्गको सधैं उपासना गऱ्यो। माघकृष्ण चतुर्दशीका दिन राति म हजुरको दास बनूँ भन्दै स्थूलपाद मऱ्यो। शिवजीका गणहरू विमान लिएर फूलको वर्षा गर्दै प्रसन्न भएर त्यसलाई धन्यवाद दिँदै यहाँ आए। रुद्रगणहरूले त्यसलाई विमानमा राखेर नोकरहरूद्वारा चमर हम्काउँदै शिवजीको शहरतिर लगे। देवता र राक्षसहरूको समूहमा योजनपाद नामले प्रसिद्ध भएको त्यो यक्ष अहिलेसम्म पनि भगवान् शङ्करको बलियो सेवक भएर बसेको छ ॥१३-१७॥

हे विरूपाक्ष ! यसपछि तिमी चार सय धनुषको दूरीमा पूर्वमा पर्ने क्षेत्रमा जाऊ। यहाँ पानीको बीचमा जलेश्वर भगवान् रहनुभएको छ ॥१८॥

यस अध्यायमा वर्णन गरिएको पर्वतेश्वर भगवान्‌को माहात्म्य जसले सुन्छ, पवित्र जल भएको ज्ञानकूपमा गएर जसले स्नान गर्छ त्यसले स्नानको फल पाउँछ र ज्ञानी बन्छ, अज्ञानबाट पैदा भएका अतिघोर पापबाट पनि मुक्त हुन्छ र ऊ शिवलोकमा जान्छ ॥१९॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा ज्ञानकूपतीर्थ र पर्वतेश्वरको माहात्म्यनामक एकसय पचासौं अध्याय पूरा भयो।

---

८. पुष्पवर्षाणि, इति न.सं.पु.पाठः।

# एकपञ्चाशदुत्तरशततमोऽध्यायः

## जलेश्वरशिवलिङ्गमाहात्म्यम्

स्कन्द उवाच

भूयो जगाम सिद्धर्षिर्यत्रास्तेऽसौ जलेश्वरः। चतुश्शते च धनुषामतस्तत्र घटोद्भव ॥१॥
जलेश्वरमहातीर्थे भक्त्या स्नात्वा विरूपदृक्। अर्चितवान्महालिङ्गं जलमध्योद्भवं मुदा ॥२॥
राधशुक्लत्रयोदश्यां निशायां तच्च[1] पूजयन्। तल्लिङ्गस्य च माहात्म्यं पप्रच्छ किल[2] नेमुनिम् ॥३॥
पृच्छ्यमानो मुनिश्रेष्ठो विरूपाक्षाय वै पुनः। व्याजहार ततो रात्रौ तन्माहात्म्यं घटोद्भव ॥४॥

नेमुनिरुवाच

आराधितो हि वाग्वत्या शिवं स्नापयितुं[3] पुरा। स्थानं पावयितुं स्वीयं[4] भक्तिभावेन नित्यशः ॥५॥
मां पाहि देवदेवेश पवित्रं कुरु सन्ततम्। लोकमान्या भविष्यामि तवागमनकारणात्[5] ॥६॥
आकर्ण्य तद्वचो रुद्रो वाग्वत्या नित्यमीरितम्। कार्त्तिकस्य सिताष्टम्यां लिङ्गं प्रादुरभूज्जले ॥७॥
जलान्तरात्समुत्तीर्य चाविर्भूतो महेश्वरः। वचो जगाद वाग्वत्यै वरं दातुं तदा मुदा ॥८॥

जलेश्वर उवाच

देवि ! वाग्वति शर्वाणि वरं वरय साम्प्रतम्। यत् सर्वं याचसे मत्तः[6] तत्सर्वञ्च ददामि ते ॥९॥
पूर्वं दत्तो वरः तुभ्यं मयाऽमरैः सुरर्षिभिः ॥१०॥
लोकवन्द्या भवाऽद्यापि सर्वकलुषनाशिनी। एवं दत्तो वरस्तुभ्यं प्रिये ! मयाऽमरैः सह ॥११॥
तथापि याच्यतां देवि दास्येऽहं निश्चितं पुनः।

---

अध्याय - १५१

## जलेश्वर शिवलिङ्गको महिमा

कुमार स्वामीले भन्नुभयो– हे अगस्त्य मुनि ! त्यसपछि ती सिद्धऋषि विरूपाक्ष जहाँ जलेश्वर भगवान् रहनुभएको थियो, चार सय धनु पर रहेको त्यस ठाउँमा गए। विरूपाक्षले जलेश्वर तीर्थमा भक्तिपूर्वक स्नान गरेर हर्षविभोर भएर जलको माध्यभागमा स्थित शिवलिङ्गको पूजा गरे। उनले माघशुक्ल त्रयोदशीको रातमा त्यस लिङ्गको पूजा गरेर लिङ्गको माहात्म्यका बारेमा नेमुनिसित प्रश्न गरे। हे अगस्त्य मुनि ! विरूपाक्षद्वारा प्रश्न सोधिएका नेमुनिले उनलाई फेरि त्यस लिङ्गको माहात्म्य बताउनुभयो ॥१-४॥

नेमुनिले भन्नुभयो – अघि वाग्वतीले आफ्नो स्थानलाई पवित्र तुल्याउन र स्वयं भगवान् शिवलाई विधिपूर्वक स्नान गराउन भक्तिपूर्वक शिवजीको आराधना गरेकी थिइन्– 'हे देवेश ! मलाई रक्षा गर्नुहोस्, सधैं मलाई पवित्र तुल्याउनुहोस्। हजुर यहाँ आई मेरो समीपमा विराजमान भइदिनुभएमा म संसारकै मान्य हुनेछु'। नित्य आराधिका वाग्वतीका यी वचन सुनेर भगवान् शङ्कर कार्तिकशुक्ल अष्टमीका दिन जलमा लिङ्गको रूप लिएर प्रकट हुनुभयो। त्यस अवसरमा जलको मध्यभागबाट प्रकट हुनुभएका भगवान् शङ्करले खुसी हुँदै वाग्वतीलाई वर दिनका लागि भन्न लाग्नुभयो ॥५-८॥

जलेश्वरले भन्नुभयो – हे देवी ! हे वाग्वती ! अब तिमी मसित जे वर माग्दछ्यौ माग, म सबै वर दिन्छु। हे वाग्वती ! पहिले नै देवता, देवर्षि र मैले पनि तिमीलाई वर दिइसकेका छौं। अहिले पनि तिमी लोकमान्य र पापनाशक होऊ। हे प्रिय वाग्वती ! देवतासँगै रहेकी तिमीलाई मैले यो वरदान दिइसकेको भए पनि हे देवी ! तिमी फेरि वर माग, म अवश्य दिन्छु ॥९-११½॥

---

१. स, इति न.सं.पु.पाठः।
२. प्रश्नञ्चकार, इति न.सं.पु.पाठः।
३. संस्नापतुम्, इति न.सं.पु.पाठः।
४. पवित्रितुं स्वतो स्थानम्, इति न.सं.पु.पाठः।
५. तवागमनसम्भवात्, इति न.सं.पु.पाठः।
६. मयि वरयसे यत्त्वम्, इति न.सं.पु.पाठः।

वाग्वत्युवाच

सर्वं दत्तं पुरा मह्यं भवता त्रिदशर्षिभिः ॥१२॥
तथापि त्वत्तः याचेऽहं देवदेव ! वरं पुनः । सर्वैर्जलचरैः कीटैरसद्भिर्जन्तुभिस्तथा ॥१३॥
मे मूर्त्तिर्दूषिता नित्यञ्चाऽमेध्या कलुषीकृता । तद्दोषैर्दूषिता चाऽहममेध्यजीविनी सदा ॥१४॥
येन पूता भवामीश याचेऽहं तद्वरं त्वयि । मम जलान्तरे नित्यं स्थातव्यं भवताऽपि च ॥१५॥
स्नापयेऽहं भवन्तं वै मत्कल्लोलैः सदाऽर्च्चनैः । ततस्तवाऽर्चनैर्देव ! पूता जलमयी ह्यहम् ॥१६॥
भविष्यामि न सन्देहस्त्वत्प्रसादात् प्रभो सदा[७] ।

जलेश्वर उवाच

एवमस्तु महादेवि वाग्वति लोकपाविनि ॥१७॥
ददामि शृणु ते देवि वरं वरय चोत्तमम् । संस्नान्ति त्वयि यावन्तः प्राणिनः ज्ञानवर्जिताः ॥१८॥
ते भविष्यन्तु निष्पापास्त्वज्जलस्पर्शनादपि । जलौकसां खगानाञ्च जङ्गमानाञ्च वाग्वति ॥१९॥
मलमूत्रैस्तथोच्छिष्टैः कदापि त्वं न दूष्यसे । एतच्छङ्कां विधायार्यो यः स्नात्यन्यनदीषु च[८] ॥२०॥
विशेषेण महानद्यां स स्यात्किल्बिषबन्धनः । नित्यं धर्मतरङ्गैस्ते चाऽत्र धर्मतरङ्गिणि ॥२१॥
कुर्वे स्नानं जलान्तःस्थो त्वत्प्रवाहाभिषेचितः[९] । ततो मत्स्नानतो लोके वदिष्यन्ति च वाग्वती ॥२२॥
धर्मतरङ्गिणी चेति शिवगङ्गा सरस्वती ।

---

वाग्वतीले भन्नुभयो– हजुरले देवता र ऋषिहरूका साथमा रहेर पहिले नै मलाई वर दिनुभएको थियो । तैपनि हे देवताका पनि देवता ! हजुरसित म फेरि वर माग्छु । सबै जलमा बस्ने कीराहरू र खराब जन्तुहरूले मेरो मूर्तिलाई अपवित्र पार्नुका साथै दूषित र मलीन बनाए । हे ईश्वर ! त्यस दोषले गर्दा म अपवित्र भएर रहिरहेकी छु । जे गर्दा म पवित्र हुन्छ, त्यो वर मलाई दिनुहोस् । हजुर सधैँ मेरो जलमा स्थित हुनुपर्छ । म हजुरलाई सधैँ आफ्ना तरङ्गले स्नान गराई पूजा गर्दछु । हे प्रभु ! यदि त्यसो भयो भने हजुरको कृपाले हजुरको पूजा गरेर जलरूपमा रहेकी म सधैँ पवित्र हुनेछु, यसमा सन्देह छैन ॥१२-१६½॥

जलेश्वरले भन्नुभयो– लोकलाई पवित्र तुल्याउने हे महादेवी वाग्वती ! तिमीले जे वराको आकाङ्क्षा राखेकी छ्यौ त्यस अनुसार नै म तिमीलाई उत्तम वर दिन्छु, सुन । जति पनि अज्ञानी प्राणीहरू छन् तिनले तिम्रो जलमा स्नान गरे भने तिनीहरू ज्ञानी हुनेछन् । तिम्रो जलको स्पर्शले मात्रै पनि तिनीहरू निष्पाप हुनेछन् । हे वाग्वती ! अबदेखि कहिल्यै पनि तिमी जलमा बस्ने प्राणीहरू, पशुपक्षीहरू र जनावरको मलमूत्र र जुठोले दूषित हुनेछैनौ । हे महानदी ! तिमी दूषित छौ कि भन्ने शङ्का गर्दै जसले तिम्रो जलमा स्नान गर्छ त्यसलाई ठूलो पाप लाग्छ । हे धर्मतरङ्गिणी ! जहाँसम्म तिम्रो प्रवाह बगिरहन्छ, त्यहाँसम्म म सधैँ जलभित्र बसेर धर्मरूपी छालले स्नान गर्नेछु । मैले स्नान गरेको हुँदा संसारले तिमीलाई वाग्वती, धर्मतरङ्गिणी, शिवगङ्गा र सरस्वती भन्नेछन् ॥१७-२२½॥

---

७. स्त्वत्प्रसादात् प्रभोऽनिशम्, इति न.सं.पु.पाठः । ८. स्नायते परे त्वयि, इति न.सं.पु.पाठः ।
९. स्नापयामि जलान्तःस्थो यावत्त्वत्प्रववाह वै, इति न.सं.पु.पाठः ।

नेमुनिरुवाच

भाषमाणः[१०] शिवश्चैवं वाग्वतीञ्च तदीप्सितम् ॥२३॥
साक्षाद्दत्वा वरं शीघ्रं तिरोदधे जलान्तरे। उवाह वाग्वती विद्वक् ![११] बहुतरङ्गिणी मुदा ॥२४॥
अभ्यर्च्च्य खलु तल्लिङ्गं स्वच्छकल्लोलपूजनैः। देवर्षिभिस्तथा सिद्धैरेतल्लिङ्गं प्रपूजितम् ॥२५॥
कालान्ते च ततो मुक्तः कश्चिद्दैत्योऽत्र वै शृणु। पूर्वजन्मनि विप्रोऽसौ गुरोर्गां हतवान् द्विज ॥२६॥
पितृनुद्दिश्य चाऽरण्ये निर्जने पालको रहः। अनिवेद्य स्वयं पित्रे तन्मांसं भुक्तवान्सुखी ॥२७॥
तत्पापैरभवल्लिप्तः कठोरैश्च त्रिभिस्तदा। गुरोर्गोहत्यया चैव[१२] पित्रेऽनिवेद्य भक्षणात् ॥२८॥
तस्माल्लोकैः समाहूतस्त्रिशङ्कुरिति विश्रुतः। जन्मान्ते सोऽभवद्दैत्यस्तत्पापलिप्तविग्रहः ॥२९॥
त्रिशङ्कुरिति विख्यातो बाणासुरात्मजो बली। स एव दृष्टवान् पूर्वमेतल्लिङ्गं प्रपूजितम् ॥३०॥
संरुध्य वाग्वतीं भक्त्या देवर्षिभिश्च पर्वणि[१३]। दुद्राव तरसा देवाञ्छरवर्षं प्रवर्षयन् ॥३१॥
स त्रिशङ्कुरिति प्रोच्य तिष्ठत रेऽमराः क्षणम्। तं प्रेक्ष्य दुद्रुवुर्देवा दिक्षु सिंहं मृगा इव ॥३२॥
ततो भक्त्या ननामेशं त्रिशङ्कुश्च परिक्रमन्। संरुध्य वाग्वतीं नित्यं गोकर्णे कन्दरे मुहुः ॥३३॥
अर्चयति स्म[१४] भक्त्या स चैतल्लिङ्गं महासुरः। एवं प्रपूजितं लिङ्गं त्रिशङ्कुना हि सन्ततम् ॥३४॥
एकसंवत्सरं व्याप्य त्रिसन्ध्यं भक्तितो मुदा। आविर्भूतः शिवो लिङ्गाद्वरं दातुं निशान्तरे ॥३५॥
कार्त्तिकस्य सिताष्टम्यां सर्वायुधोपशोभनः।

---

नेमुनिले भन्नुभयो – वाग्वतीलाई यस्तो भनेर इच्छा लागेको वर दिई शिवजी तुरुन्त जलको माभमा अन्तर्धान हुनुभयो। वाग्वती पनि निर्मल तरङ्गले शिवलिङ्गको पूजा गर्दै प्रशस्त तरङ्गयुक्त भई बग्न थालिन्। त्यसपछि देवता र सिद्धहरूले यस लिङ्गको पूजा गरे। कालान्तरमा गएर यस ठाउँमा कुनै दैत्य मुक्त भएको थियो, त्यो कुरा सुन ॥२३–२५॥

पूर्वजन्ममा एउटा ब्राह्मण थियो। उसले एकदिन गुरुको गाईको हत्या गर्‍यो र निर्जन जङ्गलमा पितृलाई लक्ष्य गरेर ल्याएको मासु पितृलाई अर्पण नै नगरी आफूले खूबसित खायो। त्यसैले गर्दा त्यो तीन किसिमका पापले ग्रस्त भयो। गुरुको गाई मारेको र पितृलाई समर्पण नगरीकन मासु खाएको हुँदा लोकमा त्यसलाई त्रिशङ्कु भनियो। त्यही पूर्वजन्मको पापले गर्दा अर्को जन्ममा त्यो प्रसिद्ध बलवान् बाणासुर दैत्यको त्रिशङ्कुनामक छोरो भएर जन्मियो ॥२६–२९॥

उसले सर्वप्रथम प्रसन्न हुँदै देवता तथा ऋषिहरूले पर्वहरूमा वाग्वतीलाई रोकेर भक्तिपूर्वक यस लिङ्गको पूजा गरेको देख्यो। त्यो त्रिशङ्कुले झटपट बाणको वर्षा गर्दै हे देवता हो ! एकछिन पर्ख भनेर दौडियो। सिंहलाई देख्दा मृगहरू दौडिएझैं देवताहरू त्यसलाई देखेर चारै दिशातिर दौडिए। त्यसपछि त्रिशङ्कुले परिक्रमा गरेर भक्तिपूर्वक शङ्करलाई नमस्कार गर्‍यो। उसले गोकर्णको गुफामा वाग्वतीलाई थुन्यो र त्यस महाराक्षसले भक्तिपूर्वक यस लिङ्गको आराधना गर्‍यो। त्रिशङ्कुले निरन्तर एक वर्षसम्म तीनै साँझमा भक्तिपूर्वक प्रसन्न हुँदै यस लिङ्गको आराधना गर्‍यो। कार्तिकशुक्ल अष्टमीको रातमा त्यसलाई वर दिन सम्पूर्ण हतियारले सुसम्पन्न हुनुभएका भगवान् शङ्कर यसै लिङ्गबाट प्रकट हुनुभयो ॥३०–३५½॥

---

१०. प्रोच्यमानः, इति न.सं.पु.पाठः।
११. वाग्वती च ववाहार्य ! इति न.सं.पु.पाठः।
१२. गुरोर्गोप्रहतेनाशु, इति न.सं.पु.पाठः।
१३. देवर्षिभिर्मुदा भक्त्या वाग्वतीं रुन्ध्य पर्वसु, इति न.सं.पु.पाठः।
१४. संपूजति स्म, इति न.सं.पु.पाठः।

जलेश्वर उवाच

दास्येऽहं ते वरं भक्त यद्वाञ्छितं हृदा तव ॥३६॥

तत्सर्वं खलु निष्पाप शृणु संयतमानसः[१५] । अद्य प्रभृति वत्स त्वं सञ्जीव्याः सततं पुनः ॥३७॥

भव ममानुगो नित्यं[१६] देवासुरैश्च दुर्जयः ।

नेमुनिरुवाच

इत्युक्त्वाऽन्तर्दधे लिङ्गे जलान्तरे जलेश्वरः ॥३८॥

वरदः सर्ववन्द्येशस्त्रिशङ्कुं श्रावयन्वरम् । ततो याने तमास्थाय त्रिशङ्कुं प्रमथा मुदा ॥३९॥

निन्युः शिवपुरं शीघ्रं गीतवाद्यैः प्रसेवितम् । तत्र गच्छ विरूपाक्ष ! यत्र गुह्येश्वरो विभुः ॥४०॥

सप्तजन्मार्जितैः पापैरत्र स्नानाद्विमुच्यते ।

शृणोति योऽध्यायमिदं सुभक्तितः स तत्र संस्नानफलं प्रलभ्य वै ।
भुनक्ति नूनं शिवलोकमङ्गलं नरो हि सन्त्यज्य कृतं स्वकिल्विषम् ॥४१॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां
जलेश्वरमाहात्म्यं नामैकपञ्चाशदुत्तरशततमोऽध्यायः ॥१५१॥

---

जलेश्वरले भन्नुभयो – हे भक्त ! म तिमीलाई तिमीले चाहेको वर दिन्छु । हे पापहीन दैत्य ! हे बाबु ! एकचित्त भएर सुन– तिमी मेरो अनुचर भई आजदेखि धेरै समयसम्म बाँच्नेछौ, देवता तथा राक्षसहरूले तिमीलाई जित्न सक्ने छैनन् ॥३६–३७॥

नेमुनिले भन्नुभयो– वरदाता, सबैका वन्दनीय जलेश्वर भगवान् त्रिशङ्कुलाई उसले पाएको वर सुनाउँदै जलभित्र रहेको लिङ्गमा अन्तर्धान हुनुभयो । त्यसपछि प्रमथगणहरूले त्रिशङ्कुलाई विमानमा राखेर प्रसन्न हुँदै गान–बजानका साथ तुरुन्त शिवपुरतिर लगे ॥३८–३९॥

हे विरूपाक्ष ! अब तिमी जहाँ गुह्येश्वर भगवान् बस्नुभएको छ, त्यस ठाउँमा जाऊ । यहाँ स्नान गर्नाले मानिसले सात जन्मसम्म गरेका पापबाट मुक्ति पाउँछ ॥४०॥

जसले यो अध्याय भक्तिपूर्वक सुन्छ, त्यसले यस तीर्थमा स्नान गरेको फल पाउँछ । त्यो व्यक्ति आफूले गरेका सम्पूर्ण पापहरूबाट मुक्त भएर मङ्गलदायक शिवलोकमा जान्छ ॥४१॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा जलेश्वरलिङ्गको माहात्म्यनामक
एकसय एकाउन्नौं अध्याय पूरा भयो ।

---

१५. मनःसमाहितः, इति न.सं.पु.पाठः ।

१६. ममानुगो भवार्याशु, इति न.सं.पु.पाठः ।

# द्विपञ्चाशदुत्तरशततमोऽध्यायः♣

गुह्यकालीसहस्रनाम

ॐ नमः श्रीगुरवे

अगस्त्य उवाच

कार्त्तिकेय त्वया प्रोक्ता गुह्येशी दक्षिणे तटे। वाग्वत्याः सरितः श्रीमन्नेपाले पीठसत्तमे ॥१॥

साम्प्रतं श्रोतुमिच्छामि तस्या नामसहस्रकम्। ब्रूहि देव महाभाग लोकानुग्रहकांक्षया ॥२॥

स्कन्द उवाच

पुरा श्रुतं मया शम्भोः सकाशाद् द्विजसत्तम। तत्तेऽहं सम्प्रवक्ष्यामि सर्वपापहरं परम् ॥३॥

गुह्येश्वर्या महाभाग अष्टोत्तरसहस्रकम्। नाम्नां श्रवणमात्रेण गुह्येशी सुप्रसीदति ॥४॥

विनियोगः

अस्य महादेव ऋषिरनुष्टुप्छन्दो गुह्येशी देवता ॐ बीजं नमः कीलकं

गुहावासिनी शक्तिश्चतुर्व्वर्गसाधने विनियोगः।

अचिन्त्याव्यक्तरूपा च अर्यमा अमलेश्वरी। अमृतार्णवमध्यस्था अर्कमण्डलवासिनी ॥५॥

---

## अध्याय - १५२

भगवती गुह्यकालीका सहस्रनाम

अगस्त्य ऋषि भन्ने -हे कुमारजी ! उत्तम पीठ नेपालमा प्रवाहित हुने वाग्वती नदीको दक्षिण तटमा भगवती गुह्येश्वरी विराजमान हुनुहुन्छ भन्ने कुरा हजुरले मलाई बताउनुभएको छ। हे महाभाग्यशाली कुमारदेव ! अहिले म भगवती गुह्येश्वरीका एकहजार नाम सुन्न चाहन्छु। कृपया सम्पूर्ण नरनारीमाथि अनुग्रह गर्ने इच्छाले भगवती गुह्येश्वरीको सहस्रनाम मलाई बताउनुहोस् ॥१-२॥

कुमारजी भन्नुभयो - हे उत्तम ऋषि ! मैले अघि भगवान् शङ्करका मुखारविन्दबाट जुन सहस्रनाम श्रवण गरेको हुँ। हे महाभाग ! आज म त्यही सम्पूर्ण पाप नाश गर्ने गुह्येश्वरी भगवतीको एकहजार आठ नामको माला तपाईंलाई सुनाउनेछु। यस गुह्येश्वरी सहस्रनामको श्रवणमात्रले पनि भगवती गुह्येश्वरी प्रसन्न हुनुहुन्छ ॥३-४॥

विनियोग-

यस गुह्येश्वरी सहस्रनाम स्तोत्रका ऋषि महादेव हुनुहुन्छ, यसको छन्द अनुष्टुप् हो, यसकी देवता भगवती गुह्येश्वरी हुनुहुन्छ, ॐकार यसको बीजमन्त्र हो, नमः यसको कीलक हो, यसकी शक्ति गुहावासिनी हुन्। म यस स्तोत्रको धर्म, अर्थ, काम र मोक्ष प्राप्तिका लागि विनियोग गर्दछु।

सहस्रनाम

(१) अचिन्त्याव्यक्तरूपा- मनबाट अचिन्तनीय र अव्यक्त स्वरूप भएकी, (२) अर्यमा- पितृहरूका रूपमा पूजित भएकी, (३) अमलेश्वरी- निर्मल अर्थात् मायारहित स्वरूप भएकी, सर्वशक्तिमती जगदीश्वरी, (४) अमृतार्णवमध्यस्था- अमृतसागरको माझमा विराजमान भएकी, (५) अर्कमण्डलवासिनी- सूर्यमण्डलमा विराजमान भई प्रकाशका किरण छर्नुहुने भगवती गुह्येश्वरीका चरणकमलमा प्रणाम गर्दछु ॥५॥

---

♣ यो गुह्येश्वरीसहस्रनाममाला योगी नरहरिनाथद्वारासम्पादित हिमवत्खण्डमा मूल पाठभित्र नराखी परिशिष्टमा हिमवत्खण्डकै नामबाट राखिएको छ। हिमवत्खण्डको अर्को पाण्डुलिपिमा यो सहस्रनाममाला हिमवत्खण्डको १५२ औं अध्यायको मूल पाठ मानेरै समावेश गरिएको सूचना योगीजीले दिनुभएको हुँदा त्यसलाई प्रमाणिक मानी गुह्येश्वरीसहस्रनामको महत्त्वलाई मनन गर्दै यस अभिनव सम्पादनमा मूलपाठकै रूपमा सानुवाद समावेश गरिएको छ।

अव्यक्तलक्षणाक्षोभा अजरा अमरार्चिता । अणिमादिगुणाधारा अम्बराम्बरधारिणी ॥६॥
अर्धमात्रात्मिका अर्द्धा अरिषड्वर्गनाशिनी । अरविन्दनिभानाथा अरविन्दनिभेक्षणा ॥७॥
अञ्जनाद्रिप्रतीकाशा अमराम्बरभूषिता । अदितिश्चाजपाऽविद्याध्वंसिनी चाऽन्तरात्मिका ॥८॥
अनन्ता अम्बुजाक्षी च अमावास्या अमातिथिः । आद्यादेवी आदिशक्तिराकृतिश्चायतानना ॥९॥
आदित्यमण्डलगता आदित्यगणसेविता । आचार्यरूपा आचारा आम्रवृक्षनिवासिनी ॥१०॥
आर्द्रा आर्द्रप्रतीकाशा आकाशान्तरचारिणी । आद्यक्षरसमायुक्ता आरम्भारम्भरूपिणी ॥११॥

---

(६) अव्यक्तलक्षणा- निराकार एवं निर्गुण स्वभावकी हुनुभएकाले जसका लक्षण व्यक्त हुँदैनन् त्यस्ती ब्रह्मस्वरूपा भगवती, (७) अक्षोभा- निर्विकार सूक्ष्म स्वरूपकी हुनुभएकीले जो क्षोभरहित हुनुहुन्छ, (८) अजरा- सर्वदा अविनाशी निर्गुण रूपमा रहनुहुने भएकाले जो बाल्य, यौवन र वृद्धावस्थाजस्ता विकारबाट मुक्त हुनुहुन्छ, (९) अमरार्चिता- देवताहरूद्वारा आराध्य भगवतीका रूपमा पूजा गरिनुभएकी, (१०) अणिमादिगुणाधारा- अणिमा, महिमा आदि सिद्धिहरूकी परम आधार बनेर रहनुभएकी, (११) अम्बराम्बरधारिणी- आफू विराट् रूपधारिणी हुनुभएकाले आकाशलाई नै वस्त्रका रूपमा धारण गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म पर्दछु ॥६॥

(१२) अर्धमात्रात्मिका- ॐकारका तीन अक्षर अ, उ, म माथि अर्धमात्राका रूपमा रहेकी, (१३) अर्धा- परमपुरुष भगवान् शिवको आधा अङ्गका रूपमा रही अर्धनारीश्वर स्वरूपको निष्पत्तिमा सहयोग पुऱ्याउनुहुने, (१४) अरिषड्वर्गनाशिनी- काम, क्रोध, लोभ, मोह, मद एवं मात्सर्यजस्ता ६ किसिमका शत्रुहरूको नाश गर्नुहुने, (१५) अरविन्दनिभा- आफ्नो सौन्दर्यका कारण नीलकमलसमान देखिनुहुने, (१६) अनाथा- जसको ईश्वर कोही छैन तर जो समग्र विश्वप्रपञ्चकी स्वामिनी हुनुहुन्छ, (१७) अरविन्दनिभेक्षणा- नीलकमलसमान नयनयुगलद्वारा सुहाएकी भगवती गुह्येश्वरीको चरणारविन्दमा म पर्दछु ॥७॥

(१८) अञ्जनाद्रिप्रतीकाशा- नीलगिरिसमान नीलो कान्तिले सुहाएकी, (१९) अमराम्बरभूषिता- अविनाशी आकाशतत्त्वद्वारा अलङ्कृत हुनुभएकी, (२०) अदितिः- ब्रह्मविद्याका रूपमा रहेकी अथवा देवताहरूकी माताका रूपमा रहेकी, (२१) अजपा- अजपा हंसगायत्रीका रूपमा रहेकी, (२२) अविद्याध्वंसिनी- माया, अविद्या आदि विभिन्न नामबाट चिनिने अज्ञानको नाश गर्नुहुने, (२३) अन्तरात्मिका- प्रत्येक प्राणीहरूका घटघटमा प्रत्यगात्मा बनेर रहनुहुने अन्तरात्मा भगवती गुह्येश्वरीको चरणारविन्दमा म पर्दछु ॥८॥

(२४) अनन्ता- जसको अन्त छैन, जो सर्वत्र सदा विराजमान हुनुहुन्छ, (२५) अम्बुजाक्षी- कमलजस्ता सुन्दर नयनले सुहाएकी, (२६) अमावास्या- पितृहरूलाई तृप्त गराउने औंसी तिथि बनेर रहनुहुने, (२७) अमातिथि- दर्शपूर्णमास यज्ञ आदि अनेक देवकर्मकी आधारशक्ति अमावास्यातिथिका रूपमा रहनुभएकी, (२८) आद्यादेवी- सृष्टिभन्दा अघिदेखि नै परब्रह्मबाट छुट्टिएकी प्रथम देवी, (२९) आदिशक्ति- शिवकी प्रथम शक्ति, (३०) आकृतिः- संसारको कल्याणका लागि स्वेच्छया आकृति धारण गर्नुहुने साकार शक्ति, (३१) आयतानना- मुख बाएर दुष्ट राक्षसहरूलाई निल्नुहुने महाकालीका रूपमा रहनुभएकी गुह्येश्वरीको चरणकमलमा प्रणाम गर्दछु ॥९॥

(३२) आदित्यमण्डलगता- सूर्यबिम्बमा सूर्यकी प्रभाशक्तिका रूपमा विराजमान हुनुहुने, (३३) आदित्यगणसेविता- अदितिका सन्तानद्वारा सेवा गरिनुभएकी, (३४) आचार्यरूपा- संसारलाई वागीश्वरीका रूपमा सम्पूर्ण विद्याको उपदेश दिने सद्गुरु सरस्वतीमाताका रूपमा पूजित देवी, (३५) आचारा- संसारका सज्जनहरूले अङ्गीकार गरेको सदाचारमा प्रतिबिम्बित हुनुहुने, (३६) आम्रवृक्षनिवासिनी- रसात्मा आँपको वृक्षमा सुमधुर फलका रूपमा प्रकट भएर संसारलाई आत्मरसको झलक देखाउनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा प्रणाम गर्दछु ॥१०॥

(३७) आर्द्रा- आराधना गर्ने भक्तहरूमाथि प्रसन्न भई करुणाकोमल एवं शीतल रूपद्वारा तिनीहरूको उद्धार गर्नुहुने, (३८) आर्द्रप्रतीकाशा- अदुवाको उपकारी गुण अँगालेर ओखतीका रूपमा सबैको उपकार गर्नुहुने, (३९) आकाशान्तरचारिणी- सूर्य, चन्द्र, तारा आदिका रूपमा आकाशको बीचमा विचरण गर्नुहुने, (४०) आद्यक्षरसमायुक्ता- ॐ को आदि अक्षर अकारका अधिपति ब्रह्माजीकी ब्राह्मी शक्तिका रूपमा रहनुहुने, (४१) आरम्भारम्भरूपिणी- सृष्टिकाल जगत्को आरम्भकाल हो, त्यस आरम्भकालको पनि आरम्भ गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥११॥

आग्नेयी आसनस्था च आनन्दानन्दविग्रहा। आद्यानन्दा आम्रगुणा आशा आनन्दविग्रहा ॥१२॥
इडा पिङ्गलरूपा च इन्द्रनीलनिभा इडा। इन्दुरूपा इन्दुधरा इन्द्राणी इन्द्रपूजिता ॥१३॥
इन्द्राक्षी इन्द्रमाता च इन्दुमण्डलरूपिणी। इन्द्रकोदण्डसंयुक्ता इषुसन्धानकारिणी ॥१४॥
ईश्वरी ईश्वरा ईशा ईशानत्रयधारिणी। ईडा ईडामयी ईला ईलासन्नतरुप्रिया ॥१५॥
उडुप्रभा उडुमती उडुमण्डलवासिनी। उमा उत्सवसम्पन्ना उषा उडुनिभानना ॥१६॥
उदकोदकरूपा च उदयाचलसंस्थिता। उद्मुखी उदासीना उदीची उर्वशी उदा ॥१७॥

---

(४२) आग्नेयी– अग्नि, वायु र सूर्यसँग सम्बन्ध राख्ने पदार्थहरूकी स्वामिनी, (४३) आसनस्था– मणिद्वीपको महामण्डपभित्र रहेको दिव्य सिंहासनमा विराजमान हुनुहुने, (४४) आनन्दा– आनन्दमय पूर्ण ब्रह्मका रूपमा रही सबैलाई आनन्द प्रदान गर्नुहुने, (४५) आनन्दविग्रहा– सबै दर्शक भक्तहरूलाई आनन्द प्रदान गर्ने आनन्दमय स्वरूप धारण गर्नुहुने, (४६) आद्यानन्दा– संसारमा सर्वोच्च र सर्वप्रथम आनन्दतत्त्वकी प्रवर्तिका, (४७) आम्रगुणा– आम्रवृक्षमा सन्निहित माधुर्यकी स्वामिनी, (४८) आशा– पूर्व आदि दिशाका रूपमा सर्वत्र व्याप्त हुनुभएकी, (४९) आनन्दविग्रहा– आनन्ददायक शारीरिक संरचनाद्वारा सुहाउनुभएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१२॥

(५०) इडा– चन्द्रनाडीका रूपमा अमृतपान गराउनुहुने, (५१) पिङ्गलरूपा– सूर्यनाडीका रूपमा रहनुभएकी, (५२) इन्द्रनीलनिभा– इन्द्रनीलमणिसमान चहकिली, (५३) इडा– प्रशंसाका रूपमा रहनुभएकी, (५४) इन्द्ररूपा– चन्द्रमाका रूपमा रहनुभएकी, (५५) इन्दुछ्टा– माहेश्वरीका रूपमा रही शिरमा अर्धचन्द्र धारण गर्नुहुने, (५६) इन्द्राणी– इन्द्रकी महारानी शचीका रूपमा रहनुहुने, (५७) इन्द्रपूजिता– इन्द्रद्वारा सुपूजित भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१३॥

(५८) इन्द्राक्षी– इन्द्रसमान हजारौं आँखाले युक्त भएकी भगवती, (५९) इन्द्रमाता– देवमाता अदितिका रूपमा रहेकी भगवती, (६०) इन्दुमण्डलरूपिणी– चन्द्रमण्डलका रूपमा रहनुभएकी, (६१) इन्द्रकोदण्डसंयुक्ता– इन्द्रधनुमा सातै रङ्गका प्रकाश भरेर चहकिली भएकी देवी, (६२) इषुसन्धानकारिणी– इन्द्रको धनुमा बाणसन्धान गर्ने पराशक्ति भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१४॥

(६३) ईश्वरी– परमेश्वरी आदिशक्ति, (६४) ईश्वरा– पार्वतीका रूपमा रहेकी देवी, (६५) ईशा– महादेवकी अनादि शक्ति, (६६) ईशानत्रयधारिणी– ब्रह्मा, विष्णु र रुद्रकी संरक्षिका, (६७) ईडा– स्तुतिका रूपमा रहेकी वाणी, (६८) ईडामयी– स्तुतिवचनद्वारा प्रशंसा गरिएकी, (६९) ईला– लक्ष्मी अथवा प्रशंसा वचनका रूपमा रहेकी देवी, (७०) ईलासन्नतरुप्रिया– प्रशंसानम्र शब्दहरूलाई मन पराउनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१५॥

(७१) उडुप्रभा– ताराहरूको कान्तिसमान कान्तिधारिणी, (७२) उडुमती– आफ्नो विराट् शरीरमा ताराहरूको माला धारण गर्नुहुने, (७३) उडुमण्डलवासिनी– तारकामण्डलमा रही ताराहरूलाई प्रकाश दिएर संसारलाई प्रकाशित गर्नुहुने, (७४) उमा– हिमालय र मेनाकी पुत्री बनेर पैदा हुनुभएकी, (७५) उत्सवसम्पन्ना– जगत्मा माङ्गलिक उत्सवका साथ प्रकाशित हुनुहुने, (७६) उषा– बिहानी बेलाका रूपमा प्रकट भई संसारमा सबैलाई सत्कर्ममा प्रवर्तन गर्नुहुने, (७७) उडुनिभानना– तारकाकान्तिसमान ज्योतिर्मय मुखमण्डलले सुहाएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१६॥

(७८) उदकोदकरूपा– महाप्रलयको बेला एकार्णवका रूपमा जलमयी शक्तिका रूपमा देखिनुहुने, (७९) उदयाचलसंस्थिता– सूर्योदयकालमा उदयाचलमा रहेर सूर्यमा प्रकाशपुञ्ज भरी सूर्यलाई यात्रामा लगाउनुहुने, (८०) उदङ्मुखी– जगत् सञ्चालनार्थ सर्वत्र भ्रमण गरे पनि उत्तर दिशामा रहेको देवतात्मा हिमालयको दिव्यधाम कैलासमा दृष्टिपात गरिरहनुहुने, (८१) उदासीना– निराकार रूपमा रहनुहुँदा परब्रह्ममा एकाकार भई आत्मानन्दमा रमाउनुहुने, (८२) उदीची– उत्तरदिशाका रूपमा रहनुहुने, (८३) उर्वशी– इन्द्रकी प्यारी विशिष्ट अप्सरा उर्वशीको रूप लिएर प्रकट हुनुहुने, (८४) उदा– निरन्तर परब्रह्मको स्मरण गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१७॥

ऊरुस्वना ऊरुश्रोणी ऊरुचारुविलोचना। ऊर्द्ध्वास्या ऊर्ध्वकेशी च ऊर्मिलोलविलोचना ॥१८॥
ऊर्ध्वाम्नायस्थिता ऊर्ध्वा ऋद्धिदा ऋद्धिरूपिणी। ऋजुरूपा ऋजुधर्मा ऋजुमार्गव्यवस्थिता ॥१९॥
ऋग्वेदरूपा ऋणहा ऋजुधर्मप्रवर्तिनी। ऋतुमती ऋतुमार्गस्था ऋकाराक्षररूपिणी ॥२०॥
लूनारिर्वरसम्भूता लूतादिविषभञ्जिनी। लूनार्त्तिहारिणी लूता ॐकाराक्षररूपिणी ॥२१॥
एका एकाक्षरीमूर्त्तिरेकमानैकनिष्ठिका। एकान्तवासिनी एणा एणशावकलोचना ॥२२॥
ऐन्द्री ऐरावतीरूढा ऐहिकामुष्मिकप्रदा। ॐकारी ह्योषधी ह्योषा ओतप्रोतविधायिनी ॥२३॥

---

(८५) ऊरुस्वना- कल्पान्तमा संसारव्यापी शब्द गर्नुहुने, (८६) ऊरुश्रोणी- साकाररूप लिँदा विशाल नितम्बले सुहाएकी, (८७) ऊरुचारुविलोचना- सुन्दर र विशाल नयन युगल धारण गर्नुहुने, (८८) ऊर्ध्वास्या- ऊर्ध्वमूलरूपमा रहनुहुने, (८९) ऊर्ध्वकेशी- महाकालीरूपमा प्रकट हुनुहुँदा ठाडा ठाडा रौँले सुहाएकी, (९०) ऊर्मिलोलविलोचना- तरङ्गचपल नयनयुगलद्वारा शोभित हुनुभएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१८॥

(९१) ऊर्ध्वाम्नायस्थिता- आगमोक्त षडाम्नायमध्ये ऊर्ध्वाम्नायमा सधैँ विराजमान हुनुहुने, (९२) ऊर्ध्वा- सधैँ आफू ब्रह्मलोकमा रही भक्तहरूलाई पनि ब्रह्मलोकमा आउन अभिप्रेरित गर्नुहुने, (९३) ऋद्धिदा- भक्तहरूलाई समृद्धि दिनुहुने, (९४) ऋद्धिरूपिणी- सदाचारी भक्तहरूका घरमा सात्त्विक समृद्धि वा दैवी सम्पदाका रूपमा रहनुहुने, (९५) ऋजुरूपा- निर्मल, कौटिल्यरहित र सत्य स्वरूपले सुहाएकी, (९६) ऋजुधर्मा- निष्कपट र निष्काम धर्मका रूपमा रहनुहुने, (९७) ऋजुमार्गव्यवस्थिता- सरल वैदिक मार्गमा रही भक्तहरूको कल्याण गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१९॥

(९८) ऋग्वेदरूपा- ऋषिहरूद्वारा सर्वप्रथम श्रवण गरिएको ज्ञानको कोश ऋग्वेदका रूपमा रहनुहुने, (९९) ऋणहा- आफ्ना आराधकहरूका ऋषिऋण, देवऋण र पितृऋण नाश गरी तिनीहरूलाई अऋणी तुल्याउनुहुने, (१००) ऋजुधर्मप्रवर्तनी- सरल र सत्य धर्मको प्रवर्तन गर्नुहुने, (१०१) ऋतुमती- वसन्त आदि ऋतुलाई लिएर प्रकृतिका रूपमा सुहाउनुहुने, (१०२) ऋतुमार्गस्था- वसन्त, ग्रीष्म, वर्षा, शरद, हेमन्त एवं शिशिर ऋतुका सोपानमा रही कालचक्रलाई सञ्चालन गर्नुहुने, (१०३) ऋकाराक्षररूपिणी- ऋकारबाट नाम आरम्भ हुने भगवती ऋद्धिशक्तिका रूपमा रहनुभएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥२०॥

(१०४) लूनारिः - महिषासुर, चण्ड, मुण्ड, शुम्भ, निशुम्भ आदि शत्रुहरूलाई छिन्नभिन्न तुल्याउनुहुने, (१०५) वरसम्भूता- भक्तहरूलाई वर दिन प्रकट हुनुहुने, (१०६) लूतादिविषभञ्जिनी- शरीरमा प्रकट हुने लूतो, खटिरो आदि विषमय रोग निवारण गर्नुहुने, (१०७) लूनार्तिहरिणी- कारणवश अङ्गभङ्ग भएका भक्तहरूका वेदना हरण गर्नुहुने, (१०८) लूता- माकुरोलेझैँ संसारप्रपञ्च फैलाई आफैँमा समाहित गर्नुहुने, (१०९) ॐकाराक्षररूपिणी- ॐकार अक्षरका रूपमा रहनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥२१॥

(११०) एका- अद्वितीय ब्रह्मरूपमा रहेकी, (१११) एकाक्षरी मूर्ति- क्लीं बीजरूप एकाक्षर मूर्तिमा मूर्तिमती हुनुहुने, (११२) एकमाना- एक परिमाणमा रही विश्व प्रपञ्चको रचना गर्नुहुने, (११३) एकनिष्ठिका- आफू शक्तिका रूपमा रही एकमात्र देवता सदाशिवमा निष्ठा राख्नुहुने, (११४) एकान्तवासिनी- संसारको प्रपञ्चदेखि पर एकान्त मणिद्वीपमा विराजमान हुनुहुने, (११५) एणा- कृष्णसार मृगका रूपमा रहनुहुने, (११६) एणशावकलोचना- कृष्णसारका बच्चाहरूको झैँ चञ्चल लोचनले सुहाएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥२२॥

(११७) ऐन्द्री- पूर्वदिशा, दुर्गा वा इन्द्राणीका रूपमा व्यक्त हुनुहुने, (११८) ऐहिकामुष्मिकप्रदा- भक्तहरूलाई इहलोक र परलोकमा उत्तम फल प्रदान गर्नुहुने, (११९) ॐकारी- ॐकारलाई विग्रह बनाई नादका रूपमा व्यक्त हुनुहुने, (१२०) ओषधी- समग्र फल पाकेपछि स्याहारिने धान, गहुँ आदि अन्नका रूपमा रहनुभएकी, (१२१) ओषा- ज्वलनतत्त्व वा दाहतत्त्वका रूपमा रहनुभएकी, (१२२) ओतप्रोतविधायिनी- सम्पूर्ण जीवहरूलाई मायामा अल्झाएर कर्मफल भोग्न लगाउनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥२३॥

और्वी औषधसम्पन्ना औपासनफलप्रदा। अन्तमध्यस्थिता देवी अन्धकासुरघातिनी ॥२४॥
कात्यायिनी कालरात्रिः कामाक्षी कामसुन्दरी। कमला कासिनी कान्ता कामदा कालकर्णिका ॥२५॥
करिकुम्भस्तनी कन्या करवीरसुवासिनी। कल्याणी कुण्डलवती कुरुक्षेत्रनिवासिनी ॥२६॥
अरविन्ददलाकारा कुण्डली कुमुदालया। कालजिह्वा करालास्या कालिका कालरूपिणी ॥२७॥

---

(१२३) और्वी- वडवानलको ज्वालाका रूपमा रहेकी अथवा भृगुवंशका प्रसिद्ध ऋषि और्वद्वारा आराधना गरिएकी अथवा तिघ्राबाट पैदा हुने वैश्यजातिकी जगत्पालिनी शक्तिका रूपमा रहेकी अथवा पृथिवीलाई धारण गर्ने महाशक्तिका रूपमा रहेकी, (१२४) औषधसम्पन्ना- जडीबुटी, ओखती र खनिजवस्तुले परिपूर्ण पृथिवीका रूपमा रहेकी, (१२५) औपासनफलप्रदा- औपासन अग्निका रूपमा रही अग्निका उपासक यज्ञकर्ता यजमानहरूलाई यज्ञफल प्रदान गर्नुहुने, (१२६) अन्तमध्यस्थिता देवी- स्फोटका रूपमा मध्य र अन्तमा रहेकी वाणी, (१२७) अन्धकासुरनाशिनी- अन्धक दैत्यको नाश गर्नुहुने अथवा अज्ञानान्धकार नाश गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥२४॥

(१२८) कात्यायनी- कात्यायन ऋषिकी कन्याका रूपमा अवतीर्ण भएकी दुर्गा, (१२९) कालरात्रि- कार्तिक कृष्ण औंसीका रूपमा रहेकी अथवा नवदुर्गामध्ये सातौँ दुर्गाका रूपमा रहेकी, अथवा प्रलयकालको रातका रूपमा रहेकी अथवा यमराजकी बहिनीका रूपमा प्रकट भएकी देवी, (१३०) कामाक्षी- सतीदेवीको कामेन्द्रिय पतन भएको ठाउँमा प्रकट भएकी कामाख्या देवी, (१३१) कामसुन्दरी- कामदेवकी सुन्दरी पत्नी रतिका रूपमा प्रकट भएकी, (१३२) कमला- भगवती लक्ष्मीका रूपमा प्रकट हुनुहुने, (१३३) कासिनी- सर्वत्र प्रकाशित हुनुहुने, (१३४) कान्ता- अत्यन्त आह्लादक स्वरूप भएकी, (१३५) कामदा- भक्तका कामना पूर्ण तुल्याउनुहुने, (१३६) कालकर्णिका- संसारका प्राणीलाई कर्मफल भोगाउन गरीबी, दुर्भाग्य अलक्ष्मी आदिका रूपमा प्रकट भएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥२५॥

(१३७) करिकुम्भस्तनी- भक्तहरूलाई दुग्धामृत पियाउन र समग्र प्राणीहरूलाई पालन गर्न विशाल दुग्ध पयोधर धारण गर्नुहुने, (१३८) कन्या- प्रत्येक घरमा छोरीका रूपमा प्रकट हुनुहुने, (१३९) करवीरसुवासिनी- श्मशानमा वास गर्नुहुने, (१४०) कल्याणी- आमाका रूपमा रही सबै प्राणीहरूको कल्याण गर्नुहुने, (१४१) कुण्डलवती- अवतारग्रहण गर्दा स्वरूपसौन्दर्यका लागि कुण्डल धारण गर्नुहुने अथवा विराट् रूप धारण गर्दा सूर्य र चन्द्रलाई कुण्डलका रूपमा धारण गर्नुहुने, (१४२) कुरुक्षेत्रनिवासिनी- कुरुक्षेत्रमा सरस्वतीका रूपमा रहेकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥२६॥

(१४३) अरविन्ददलाकारा- नीलकमलका पत्रझैँ नीलो ब्रह्मात्मक तेजले धप्प बलेकी, (१४४) कुण्डली- ब्रह्मरसास्वाद गराउने कुण्डलिनी नाडीका रूपमा रहेकी, (१४५) कुमुदालया- कुमुदवनकी शोभाका रूपमा प्रकट हुने, (१४६) कालजिह्वा- महाकालीका रूपमा रही मृत्युको जिब्रो फैलाउनुहुने, (१४७) करालास्या- महाकालीका रूपमा विकराल मुखमण्डल धारण गर्नुहुने, (१४८) कालिका- महाकालीका अनेक भेद लिएर दुर्जनहरूको दलन गर्नुहुने, (१४९) कालरूपिणी- सबैलाई मृत्युमुखमा पुऱ्याउने महाकालीका रूपमा रहनुहुने संहारशक्ति भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥२७॥

कमनीयगुणा कान्तिः कराधारा कुमुद्वती। कौशिकी कमलाधारा कामतारप्रभञ्जिनी ॥२८॥
कौमारी करुणापाङ्गी कुन्ददला करिप्रिया। केशिनी केशवनुता कदम्बकुसुमप्रिया ॥२९॥
कालिन्दी कालिकाकाञ्ची कलशोद्भवसंस्तुता। काममाता ऋतुमती कामरूपा क्रियावती ॥३०॥
कुमारी कुन्दनिलया किरात कीलवाहना। कैकेयी कोकिलालापा केतकीकुसुमप्रिया ॥३१॥
कमण्डलुधरा क्रूरा कर्मनिर्मूलकारिणी। कलहंसगतिः कुब्जा कृतकौतुकमङ्गला ॥३२॥

---

(१५०) कामनीयगुणा– सबैलाई आह्लादक लाग्ने अलौकिक गुणले सुहाएकी, (१५१) कान्तिः– सम्पूर्ण उत्तम पदार्थहरूमा सौन्दर्यका रूपमा प्रस्फुटित हुने, (१५२) कुमुद्वती– कुमुदिनीका रूपमा सुहाएकी, (१५३) कलाधारा– सम्पूर्ण कलाकी आधार, (१५४) कौशिकी– सप्तकौशिकीका रूपमा प्रवाहित, (१५५) कमलाधारा– कमलवनकी आधार सरोवरका रूपमा रहेकी अथवा लक्ष्मी एवं शोभाकी आधार, (१५६) कामाचारप्रभञ्जिनी– स्वेच्छाचार नाश गरी समाजको कल्याण गर्ने, (१५७) कौमारी– भगवान् कार्तिकेयकी शक्ति षष्ठीदेवीका रूपमा रहेकी, (१५८) करुणापाङ्गी– सकल प्राणीकी आमा बनेर करुणाकटाक्षको वर्षा गर्नुहुने, (१५९) कुन्ददला– कुन्दपुष्पका पत्रझैं अत्यन्त उज्ज्वल वर्ण भएकी सरस्वतीका रूपमा प्रकट हुनुहुने, (१६०) करिप्रिया– हात्तीहरूद्वारा प्यारो सुँडद्वारा सेचन गरिएकी महालक्ष्मी, (१६१) केशिनी– राम्रो चुल्ठो भएकी भगवती अथवा शङ्खपुष्पीका रूपमा प्रकट भई लोककल्याण गर्नुहुने देवी, (१६२) केशवनुता– भगवान् नारायणद्वारा संस्तुता मणिद्वीपनिवासिनी भुवनेश्वरीका रूपमा विराजमान, (१६३) कदम्बकुसुमप्रिया– कदमका फूल मन पराउनुहुने, (१६४) कालिन्दी– सूर्यपुत्री यमुनाका रूपमा प्रकट हुनुभएकी भगवती, (१६५) कालिका– कौशिकी देवी पार्वती देवीको शरीरबाट बाहिर निस्केपछि पार्वतीको शरीर कालो भयो र उहाँ कालिका नामले प्रसिद्ध हुनुभयो त्यस्ती कालिका, (१६६) काञ्ची– विष्णुकाञ्ची र शिवकाञ्चीका रूपमा प्रसिद्ध तीर्थस्थलीका रूपमा रहनुभएकी, (१६७) कलशोद्भवसंस्तुता– महर्षि अगस्त्यद्वारा स्तुति गरिएकी, (१६८) काममाता– भगवती पार्वती, (१६९) ऋतुमती– सम्पूर्ण यज्ञसंस्थाहरूकी स्वामिनी, (१७०) कामरूपा– स्वेच्छानुसार अनेक रूप लिनुहुने, (१७१) क्रियावती– सम्पूर्ण क्रियाहरूकी अधिष्ठात्री भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥२८–३०॥

(१७२) कुमारी– पृथिवीलाई मालाका रूपमा धारण गर्नुहुने अथवा र एवं लको अभेद हुँदा कुमारी अर्थात् दुर्गा भगवती, (१७३) कुन्दनिलया– कुन्दपुष्पमा ज्योतिर्मय कान्तिका रूपमा सुहाएकी, (१७४) किराती– भगवान् शिवले किरातरूप लिनुहुँदा किरातिनीका रूपमा प्रकट हुनुभएकी, (१७५) कीलवाहना– शस्त्रास्त्रधारिणी भगवती चण्डी अथवा अवसरविशेषमा भगवान् शिवलाई वाहनका रूपमा उपयोग गर्नुहुने, (१७६) कैकेयी– दशरथकी माहिली रानी र रामकी विमाता भई रामावतारको लक्ष्यपूर्तिमा सहयोगिनी देवी, (१७७) कोकिलालापा– कोइलीको पञ्चम नादमधुर स्वर उच्चारण गर्नुहुने, (१७८) केतकीकुसुमप्रिया– केतकीको फूललाई रुचाएर शृङ्गारमा उपयोग गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥३१॥

(१७९) कमण्डलुधरा– भगवती ब्रह्माणीको रूप लिएर कमण्डलु धारण गर्नुहुने, (१८०) क्रूरा– पापीहरूका निमित्त कालीको रूप धारण गरी क्रूरतापूर्वक तिनीहरूको संहार गर्नुहुने, (१८१) कर्मनिर्मूलकारिणी– अध्यात्मपथमा लागेका भक्तहरूका प्रारब्ध, सञ्चित र आगामी कर्मका जरा काटेर तिनीहरूलाई विशुद्ध तुल्याउनुहुने, (१८२) कलहंसगतिः– कलहंससमान सुन्दर हिँडाइ भएकी, (१८३) कुब्जा– दशप्रकारका सिद्धविद्यामध्ये एक सिद्धविद्याका रूपमा रहेकी देवी जसलाई कुब्जिका पनि भनिन्छ, (१८४) कृतकौतुकमङ्गला– परमात्मा शिवलाई रिझाउन अनेक कौतुक र मङ्गलकार्य गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥३२॥

कस्तूरीतिलका कम्रा करीन्द्रगमना कुहुः । कर्प्पूरलेपना कृष्णा कपिला कुहराश्रया ॥३३॥
कूटस्था कुधरा कम्रा कुक्षिस्थाखिलविष्टपा । खड्गखेटधरा खर्वी खेचरी खगवाहना ॥३४॥
खट्वाङ्गधारिणी ख्याता खगराजोपरिस्थिता । खलघ्नी खण्डितजरा खडाख्यातिप्रदायिनी ॥३५॥
खण्डेन्दुतिलका गङ्गा गणेशगुहपूजिता । गायत्री गोमती गीता गान्धारी गानलोलुपा ॥३६॥

---

(१८५) कस्तूरीतिलका- कस्तूरीको टीका लगाई जगत्लाई वशीभूत गर्नुहुने, (१८६) कम्रा- कुमारको उत्पत्तिका लागि भगवान् शिवसँग सहवासको इच्छा गर्नुहुने, (१८७) करीन्द्रगमना- गजराजगामिनी, (१८८) कुहुः- अमावास्या तिथिका रूपमा प्रकट भई देवता र पितृलाई तृप्त गराउनुहुने, (१८९) कर्पूरलेपना- शरीरमा कपूर लगाई सौन्दर्य बढाउनुहुने, (१९०) कृष्णा- कृष्णकी बहिनी विन्ध्यवासिनीका रूपमा प्रकट भएकी अथवा भगवती महाकालीका रूपमा विराजमान हुने अथवा शालग्रामवाहिनी कृष्णा (काली) नदीका रूपमा रहनुभएकी, (१९१) कपिला- दक्षप्रजापतिकी एक छोरीका रूपमा पैदा भएकी देवी अथवा कपिला गाईका दश भेदका रूपमा रहेकी, (१९२) कुहराश्रया- शिवसन्तुष्टिका लागि मिथुनधर्ममा प्रवृत्त भई लोककल्याण गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥३३॥

(१९३) कूटस्था- अनादिकालदेखि सर्वोपरि परब्रह्मका रूपमा विराजमान अथवा मायाका रूपमा रहेकी, (१९४) कुधरा- बाटो बिराएर शरणमा आएका दुष्ट नारीहरूलाई सत्कर्ममा प्रवृत्त गराएर तिनीहरूलाई धारण गर्नुहुने, (१९५) कम्रा- अत्यन्त आकर्षक यौवन र शृङ्गारले सुहाएकी, (१९६) कुक्षिस्थाखिलविष्टपा- आफ्नो काखीभित्र सबै भुवनहरूलाई अटाउन सक्नुहुने, (१९७) खड्गखेटधरा- चण्डीका रूपमा प्रकट भई तरवार एवं ढाल धारण गर्नुहुने, (१९८) खर्वी- भगवान् वामनकी शक्तिका रूपमा वामनरूपमा प्रकट हुनुहुने, (१९९) खेचरी- भगवती दुर्गाका रूपमा रहनुहुने, (२००) खगवाहना- भगवती वैष्णवीका रूपमा प्रकट भई गरुडमा सवार हुनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥३४॥

(२०१) खट्वाङ्गधारिणी- खाटको खुट्टाजस्तो आकार भएको प्रसिद्ध हतियार धारण गर्नुहुने, (२०२) ख्याता- परमेश्वरको इच्छाअनुसार जगत् सञ्चालनका लागि मायाका रूपमा विख्यात भएकी, (२०३) खगराजोपरिस्थिता- पक्षिराज गरुडमा सवार हुनुहुने वैष्णवी देवी, (२०४) खलघ्नी- महाकाली एवं दुर्गाको अवतार लिएर धर्मद्रोही महिषासुर आदिको नाश गर्नुहुने, (२०५) खण्डितजरा- वृद्धावस्थालाई आउनै नदिई अर्थात् खण्डित गरी सधैँ युवतीका रूपमा रहनुहुने, (२०६) खडाख्यातिप्रदायिनी- डलयोरभेदः यस नियमअनुसार 'खड' को दोस्रो रूप 'खल' हुन्छ, तदनुसार दुष्टहरूलाई दुष्कीर्ति वा अकीर्ति प्रदान गर्नुहुने भगवती गुह्येश्वरीका चरणकमलमा म प्रणाम गर्दछु ॥३५॥

(२०७) खण्डेन्दुतिलका- माहेश्वरीको रूप धारण गरी निधारमा अर्धचन्द्र धारण गर्नुहुने, (२०८) गङ्गा- भगवान् विष्णुकी प्रिया भागीरथी बनेर स्वर्ग, मर्त्य र पातालमा प्रवाहित हुनुहुने, (२०९) गणेशगुहपूजिता- गणेश र स्वामी कार्तिकेयद्वारा आमाका रूपमा पूजा गरिनुभएकी, (२१०) गायत्री- गायत्री सावित्री र सरस्वतीका रूपमा विख्यात गायत्रीमन्त्रकी अधिष्ठात्री देवी, (२११) गोमती- गोमतीनामक वैदिक ऋचाका रूपमा रहेकी देवी अथवा गोमती नामबाट प्रसिद्ध अनेक नदीका रूपमा फैलिएकी भगवती अथवा द्वारकानजिकै गोमन्त पर्वतमा रहेकी देवी, (२१२) गीता- श्रीकृष्णका मुखारबिन्दबाट प्रकट भई सर्वप्रथम अर्जुनद्वारा श्रवण गरिएको ब्रह्मविद्या गीतोपनिषद् र अनेक गीतानाम प्रसिद्ध पूजित ग्रन्थहरूको जीवन्त तत्त्वका रूपमा रहेकी देवी, (२१३) गान्धारी- कुण्डलिनीयोगअनुसार बायाँ आँखामाथि रहने नाडीका रूपमा रहेकी देवी अथवा पतिव्रताशिरोमणि, कौरवहरूकी आमा एवं धृतराष्ट्रकी रानीका रूपमा रहेकी देवी, (२१४) गानलोलुपा- भक्तिसङ्गीतमा अनुराग भएकी, भक्तहरूकी आराध्या, करुणामयी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥३६॥

गौतमी गामिनी गन्धा गन्धर्वाप्सरसेविता। गोविन्दचरणक्रान्ता गुणत्रयविभाविता ॥३७॥
गन्धर्वी ग्लौहरी गात्रा गिरीशा गहनागमा। गुहावासा गुणवती गुरुपापप्रणाशिनी ॥३८॥
गुर्वी गुणवती गुह्या गोपिका गुणदायिनी। गिरिजा गुहमातङ्गी गरुडध्वजवल्लभा ॥३९॥
गर्वापहारिणी गोदा गोकुलस्था गदाधरा। गोकर्णनिलया गुह्या गुह्यमण्डलवर्त्तिनी ॥४०॥
घर्मदा घनदा घण्टा घोरदानवमर्द्दिनी। घृणिमन्त्रचया घोषा घनसम्पत्प्रदायिनी ॥४१॥

---

(२१५) गौतमी- गोदावरी नदीका रूपमा अथवा गौतमपत्नी अहल्याका रूपमा अथवा भगवती दुर्गाका रूपमा रहेकी देवी, (२१६) गामिनी- संसार सागर तर्ने डुँगाका रूपमा रहेकी भगवती, (२१७) गन्धा- पृथिवीका रूपमा रहेकी देवी, (२१८) गन्धर्वाप्सरःसेविता- गन्धर्व र अप्सरागणद्वारा सेवा गरिएकी, (२१९) गोविन्दचरणक्रान्ता- भगवान् गोविन्द अर्थात् वामनावतार विष्णुका चरणकमलद्वारा नापिएकी, (२२०) गुणत्रयविभाविता- तीन गुणद्वारा व्यक्त हुने प्रकृतिका रूपमा रहेकी, (२२१) गन्धर्वी- पुण्य र पापको भोग गर्ने सूक्ष्मदेहधारी जीवहरूकी स्वामिनी, (२२२) ग्लौहरी- चन्द्रमालाई शिरमा धारण गर्नुहुने, (२२३) गात्रा- सकलजीवहरूको शरीर बनेर उनीहरूको रक्षा गर्नुहुने, (२२४) गिरीशा- पर्वतहरूकी स्वामिनी, (२२५) गहनागमा- अल्पबुद्धि व्यक्तिद्वारा दुर्बोध्य आगमहरूकी रहस्यज्ञा, (२२६) गुहावासा- शिवप्राप्तिका निमित्त हिमालयका गुफाहरूमा निवास गर्नुहुने, (२२७) गुणवती- दया, दाक्षिण्य आदि गुणहरूकी मुहान, (२२८) गुरुपापप्रणाशिनी- तपस्वी आराधकहरूका पाँच महापातक नाश गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥३७-३८॥

(२२९) गुर्वी- ऐश्वर्य, धर्म, यश, ज्ञान र वैराग्यकी स्वामिनी भएकाले अत्यन्त महिमामयी भगवती गुह्येश्वरीका रूपमा रहनुहुने, (२३०) गुणवती- सत्त्व, रज र तमोगुणद्वारा संसार प्रकट गर्नुहुने, (२३१) गुह्या- परब्रह्मका रूपमा गुप्त रहेकी अथवा गुह्यकाली नामबाट प्रसिद्ध हुनुभएकी, (२३२) गोपिका- गोपनन्दिनी राधाका रूपमा प्रकट भएर श्रीकृष्णसँग लीलाविहार गर्नुहुने, (२३३) गुणदायिनी- प्यारा भक्तहरूलाई आफ्ना दिव्य गुण प्रदान गर्नुहुने, (२३४) गिरिजा- हिमालयनन्दिनी पार्वतीका रूपमा प्रकट भएकी, (२३५) गुहमातङ्गी- दश महाविद्याका उच्छिष्ट मातङ्गी आदि भेदमध्ये एक रूपमा रहनुभएकी, (२३६) गरुडध्वजवल्लभा- भगवान् विष्णुकी प्रियतमा लक्ष्मीका रूपमा रहनुभएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥३९॥

(२३७) गर्वापहारिणी- अहङ्कारीहरूको अहङ्कार नाश गर्नुहुने, (२३८) गोदा- ज्ञान प्रदान गर्ने गुरुका रूपमा हुनुभएकी, (२३९) गोकुलस्था- गोवंशमा गोलक्ष्मीका रूपमा रहेकी अथवा गोकुलमा व्रजेश्वरीका रूपमा रहनुहुने, (२४०) गदाधरा- वैष्णवी शक्तिका रूपमा गदानामक आयुध धारण गर्नुहुने, (२४१) गोकर्णनिलया- गोकर्णक्षेत्रमा शिवशक्तिका रूपमा विराजमान, (२४२) गुह्या- गोप्यरूपमा सर्वत्र विराजमान अथवा गुह्येश्वरीका रूपमा विराजमान, (२४३) गुह्यमण्डलवर्तिनी- रहस्यमय शक्तिलोकमा विराजमान हुनुभएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥४०॥

(२४४) घर्मदा- माया वा अज्ञानको उष्णता फैलाउनुहुने, (२४५) घनदा- संसारलाई मायाको बादलले ढाक्नुहुने, (२४६) घण्टा- विभिन्न घटनाद्वारा मानिसहरूलाई सावधान गराउने, (२४७) घोरदानवमर्दिनी- भयङ्कर दानवहरूको संहार गर्नुहुने, (२४८) घृणिमन्त्रचया- सूर्यसम्बन्धी मन्त्रहरूकी पुञ्ज अथवा जलसम्बन्धी मन्त्रहरूकी मुहान, (२४९) घोषा- शब्दहरूमा घोषका रूपमा रहेकी अथवा आज्ञा वा उपदेशकी मूल केन्द्र अथवा वीणावादिनी, (२५०) घनसम्पत्प्रदायिनी- घन अर्थात् गहन सम्पत्ति धारण गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥४१॥

घण्टारवप्रिया घोणी घृणिसन्तुष्टकारिणी। घातारिमण्डला घूर्णा घृताची घनवेगिनी ॥४२॥
ज्ञानाचारवती चर्चा चर्विणी चारुहासिनी। चतुरा चन्द्रिका चित्रा चित्रमालाविभूषिता ॥४३॥
चतुर्भुजा चारुदन्ता चातुरी चरितप्रदा। चूरिता चित्रविश्रान्ता चन्द्राभा चूर्णकुन्तला ॥४४॥
चन्द्रहासा चारुगात्री चकोरी चन्द्रहासिनी। चन्द्रिका चित्रधात्री च चोरा चौरा च चण्डिका ॥४५॥
चञ्चद्वाग्वादिनी चन्द्रचूडा चन्द्रविलासिनी। चारुचन्दनलिप्ताङ्गी चञ्चच्चामरवीजिता ॥४६॥
चारुमध्या चारुगतिश्चन्द्रिका चन्द्ररूपिणी। चारुभोगप्रियाचार्या चरिता चक्रधारिणी ॥४७॥

---

(२५१) घण्टारवप्रिया- घण्टाध्वनि मन पराउनुहुने, (२५२) घोणी- भगवान् वाराहकी शक्ति वाराही, (२५३) घृणिसन्तुष्टकारिणी- दुःखी गरीवलाई तुष्टि दिनुहुने, (२५४) घातारिमण्डला- शत्रुसमूहको संहार गर्नुहुने, (२५५) घूर्णा- संहारको कल्याणका लागि नित्य भ्रमणशील, (२५६) घनवेगिनी- गम्भीर वेग भएकी महाकाली भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥४२॥

(२५७) ज्ञानाचारव्रती- उत्तम ज्ञान र सदाचारव्रतले सुहाएकी, (२५८) चर्चा- गायत्री, दुर्गा वा चिन्तनका रूपमा रहेकी, (२५९) चर्विणी- संहारकालमा महाकालकी शक्ति महाकाली बनेर विश्वब्रह्माण्डलाई चपाउनुहुने, (२६०) चारुहासिनी- करुणा, प्रेम र शान्ति व्यक्त गर्ने मीठो हाँसो भएकी भगवती, (२६१) चतुरा- संसार सञ्चालन र भक्तहरूको उद्धार गर्न निपुण भगवती, (२६२) चन्द्रिका- चन्द्रमाकी चाँदनी बनेर विश्वलाई अमृतपान गराउनुहुने, (२६३) चित्रा- चित्रा नक्षत्रका रूपमा रही चन्द्रमाकी प्रेयसीका रूपमा प्रकट भएकी, (२६४) चित्रमालाविभूविता- साकार रूपमा रहँदा रङ्गी विरङ्गी माला धारण गरी सुहाउनुभएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥४३॥

(२६५) चतुर्भुजा- वैष्णवी आदि रूपमा रहँदा चार भुजा धारण गर्नुहुने अथवा धर्म, अर्थ, काम र मोक्षका रूपमा चारभुजा धारण गर्नुहुने, (२६६) चारुदन्ता- सुन्दर दन्तपङ्क्तिले सुहाएकी, (२६७) चातुरी- प्राणीहरूमा चतुरताका रूपमा व्यक्त हुने, (२६८) चरितप्रदा- आफ्ना असल चरित्रका माध्यमले संसारलाई उत्तम चरित्रको उपदेश प्रदान गर्नुहुने, (२६९) चूरिता- दिव्य भवनहरूमा चन्द्रशालाका रूपमा रहेकी, (२७०) चित्रविश्रान्ता- संसारचित्रको निर्माण गरी त्यसमा विश्राम गर्नुहुने, (२७१) चन्द्रभा- चन्द्रमाझैं उज्ज्वल कान्तिले सुहाएकी, (२७२) चूर्णकुन्तला- कुटिल केशले सुहाएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥४४॥

(२७३) चन्द्रहासा- हातमा तरवार लिनुहुने, (२७४) चारुगात्री- सुन्दर अङ्ग-प्रत्यङ्गले सुहाएकी, (२७५) चकोरी- भगवान् शिवको विरहमा पोथी च्याखुराको आचरण गर्नुहुने, (२७६) चन्द्रहासिनी- चन्द्रमाको कान्तिजस्तै उज्ज्वल मुस्कान छर्नुहुने, (२७७) चन्द्रिका- चन्द्रभागा नदीका रूपमा प्रवहमान, (२७८) चित्रधात्री- चित्रकलाको रक्षा गर्नुहुने अथवा आफूले तयार गरेको संसारचित्रको रक्षा गर्नुहुने, (२७९) चोरा- शङ्खपुष्पीका रूपमा प्रकट हुनुभएकी, (२८०) चौरा- गायत्रीका रूपमा विराजमान, (२८१) चण्डिका- दुर्गा अथवा गायत्रीका रूपमा विराजमान भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥४५॥

(२८२) चञ्चद्वाग्वादिनी- ज्ञानको आभाले चहकिली सरस्वतीका रूपमा प्रकट हुनुहुने, (२८३) चन्द्रचूडा- शिरमा चन्द्रमा धारण गर्नुहुने, (२८४) चन्द्रविलासिनी- रोहिणी वा ताराका रूपमा चन्द्रमासँग भोगविलास गर्नुहुने, (२८५) चारुचन्दनलिप्ताङ्गी- अङ्गप्रत्यङ्गमा सुन्दर चन्दनको लेप लगाउनुहुने, (२८६) चञ्चच्चामरवीजिता- पार्षदहरूद्वारा सुन्दर चँवर डुलाएर सेवा गरिएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥४६॥

(२८७) चारुमध्या- साकार दिव्यस्वरूपमा प्रकट हुँदा सुन्दर एवं छिन्न कटिभागले सुहाएकी, (२८८) चारुगतिः- आकर्षक गतिले सम्पन्न, (२८९) चन्द्रिका- चन्द्रमाकी चाँदनी वा चन्द्रकान्तमणिकी उत्पत्तिकेन्द्र, (२९०) चन्द्ररूपिणी- चन्द्रमाका रूपमा प्रकट भएकी, (२९१) चारुभोगप्रियाचार्या- सुन्दर भोग विलास रुचाउने सुन्दरीहरूकी शिरोमणि, (२९२) चरिता- उत्तम चरित्रका रूपमा प्रकट हुने, (२९३) चक्रधारिणी- वैष्णवीरूपमा रही सुदर्शन चक्र लिनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥४७॥

चन्द्रमण्डलमध्यस्था चन्द्रमण्डलदर्पणा। चक्रवाकस्तनी चेष्टा चित्रा चारुविलासिनी ॥४८॥
चित्स्वरूपा चन्द्रवती चन्द्रभा चन्दनप्रिया। चोदयित्री चिरप्रज्ञा चातकाधानहेतुकी ॥४९॥
छत्रप्रीता च्छत्रधरा च्छाया च्छेदपरिच्छदा। छायादेवी च्छिद्रनखी च्छिन्नेद्रिया विसर्पिणी ॥५०॥
छन्दोनुष्टुप्प्रतिष्ठान्ता छिन्द्रोपद्रवच्छेदिनी। छन्दोच्छत्रेश्वरीच्छिन्ना च्छुरिकाच्छेदनक्रिया ॥५१॥
जननी जन्मरहिता जातवेदा जगन्मयी। जाह्नवी जटिला जैत्री जरामरणवर्जिता ॥५२॥

---

(२९४) चन्द्रमण्डलमध्यस्था- चन्द्रमण्डलको माझमा रही अमृतवर्षा गर्नुहुने, (२९५) चन्द्रमण्डलदर्पणा- चन्द्रमण्डललाई ऐनाका रूपमा प्रयोग गर्नुहुने, (२९६) चक्रवाकस्तनी- चखेवा समान कुचकलश धारण गर्नुहुने, (२९७) चेष्टा- सम्पूर्ण प्राणीहरूमा प्राणचेष्ट्य वा प्राणस्पन्दनका रूपमा विराजमान, (२९८) चित्रा- विलक्षण स्वभाव र ऐश्वर्यकी स्वामिनी, (२९९) चारुविलासिनी- सुन्दर विलास हावभावकी स्वामिनी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥४८॥

(३००) चित्स्वरूपा- सम्पूर्ण प्राणीहरूमा चैतन्य वा चेतनाका रूपमा रहेकी, (३०१) चन्द्रवती- मनका रूपमा चन्द्रमालाई धारण गर्नुहुने, (३०२) चन्द्रभा- शुक्लयजुर्वेदअनुसार परमात्माको मनबाट पैदा भएका सूर्यको किरणद्वारा चम्किने उज्ज्वल ग्रह, महाभारतअनुसार समुद्रमन्थन गर्दा उत्पन्न दीप्त ग्रह र श्रीमद्भागवतअनुसार ब्रह्माका मानसपुत्र अत्रिबाट उत्पन्न जाज्वल्यमान ग्रहका रूपमा रहेकी भगवती, (३०३) चन्दनप्रिया- प्रसिद्ध चन्दन गिरिमा रही चन्दनभराटेश्वर महादेवलाई चन्दन टक्र्याउन मन पराउनुहुने पार्वती, (३०४) चोदयित्री- श्रुतिका रूपमा रही सबैलाई कर्म, उपासना र ज्ञानको मार्गमा जान प्रेरणा दिनुहने वाङ्मयी मूर्ति, (३०५) चिरप्रज्ञा- सृष्टिको आरम्भदेखि अन्तसम्म प्रज्ञामयी बनेर निगम र आगम धारण गर्नुहुने, (३०६) चातकाधानहेतुकी- वर्षा ऋतु बनेर चातकहरूलाई गर्भाधान गर्न अभिप्रेरित गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥४९॥

(३०७) छत्रप्रीता- मणिद्वीपको जगदम्बामण्डपमा रही राजछत्र ओढाउँदा प्रसन्न मुद्रामा देखिनुहुने, (३०८) छत्रधरा- राजकीय छत्र धारण गर्नुहुने, (३०९) छाया- सूर्यकी पत्नी छायाका रूपमा रहेकी अथवा दुर्गा देवीका रूपमा रहेकी, (३१०) छेदपरिच्छदा- छिन्नभिन्न हुन लागेको भक्तलाई कृपाको वस्त्र ओढाइ रक्षा गर्नुहुने, (३११) छायादेवी- सौन्दर्यसम्पन्न भगवती, (३१२) छिद्रनखी- नङहरूबाट नौको संख्या बताई अर्थात् परब्रह्मलाई सङ्केत गरी बाँकी संख्याद्वारा जगत्को सङ्केत गर्नुहुने, (३१३) छिन्नेन्द्रिया- विषयभोगमा प्रवृत्त गराउने इन्द्रियलाई छिन्नभिन्न तुल्याई आत्माका रूपमा देदीप्यमान, (३१४) विसर्पिणी- विहीँसमान आकारको ऐरेलूका रूपमा रही ओखती बनेर जगत्को कल्याण गर्नुहुने अथवा संसारमा सर्वत्र फैलिएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥५०॥

(३१५) छन्दोऽनुष्टुप्प्रतिष्ठान्ता- अनुष्टुप् छन्ददेखि प्रतिष्ठा छन्दसम्म व्याप्त भई वैदिक वाङ्मयको रक्षा गर्नुहुने, (३१६) छिद्रोपद्रवछेदिनी- त्रुटिका छिद्र र उपद्रवहरूको नाश गर्नुहुने, (३१७) छन्दच्छत्रेश्वरी- वेदरूपी छाताकी स्वामिनी, (३१८) छिन्ना- प्रकृतिबाट छिन्न भई केवल ब्रह्मरूपमा रहेकी, (३१९) छुरिकाछेदनक्रिया- ज्ञानरूपी छुराद्वारा माया वा अज्ञानलाई छेदन गर्ने क्रियाकी सञ्चालिका भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥५१॥

(३२०) जननी- विश्वब्रह्माण्डकी आमा, (३२१) जन्मरहिता- अजन्मा, स्वयं प्रकाशरूपा भगवती, (३२२) जातवेदाः- अग्निरूपिणी, (३२३) जगन्मयी- परब्रह्मको इच्छानुसार जगत्का रूपमा परिणत भएकी, (३२४) जाह्नवी- जह्नुकन्या गङ्गाका रूपमा परिणत भएकी, (३२५) जटिला- माया भेदन नगरेसम्म प्राप्त गर्न नसकिने स्वरूपमा रहेकी, (३२६) जैत्री- आफ्नो अमोघ शक्तिका कारण सर्वत्र विजय प्राप्त गर्नुहुने, (३२७) जरामरणवर्जिता- वृद्धावस्था र मृत्युदेखि पर रहेकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥५२॥

जम्बूद्वीपवती ज्योत्स्ना जयन्ती जयसाधिनी। जितेन्द्रिया जितक्रोधा जितामित्रा जगत्प्रिया ॥५३॥
जातरूपमयी जिह्वा जानकी जगती जरा। जनित्री जह्नुतनया जगत्त्रयहितैषिणी ॥५४॥
ज्वालावती जपवती ज्वालघ्नी जितविष्टपा। जिह्वाक्रान्तमहाज्वाला जाग्रती ज्वलदैवता ॥५५॥
ज्वलन्ती ज्वलदा ज्येष्ठा ज्याघोषास्फोटदिङ्मुखा। जम्भनी जृम्भिणी जृम्भा ज्वलन्मारीककुञ्जला ॥५६॥
झिल्लिकागणनिर्घोषा झञ्झामारुतवेगिनी। झल्लरीवाद्यकुशला झषरूपा झषध्वजा ॥५७॥

---

(३२८) जम्बूद्वीपवती- धर्माचरण वा उत्तम कर्मसम्पादनका लागि निर्दिष्ट जम्बूद्वीपमा अवतीर्ण भई अनेक लीला गर्नुहुने, (३२९) ज्योत्स्ना- चन्द्रमाको चन्द्रिकाका रूपमा देदीप्यमान, (३३०) जयन्ती- भगवती दुर्गा वा इन्द्रकन्याका रूपमा प्रकट भएकी, (३३१) जयसाधिनी- सर्वत्र विजय प्रदान गर्नुहुने, (३३२) जितेन्द्रिया- इन्द्रियमाथि विजय गरी दिव्य स्वभावमा रहनुहुने, (३३३) जितक्रोधा- क्रोध र क्रोधका प्रतीक महिषासुर आदि दानवहरूको दलन गर्नुहुने, (३३४) जितामित्रा- संसारका शत्रुहरूमाथि विजय गर्नुहुने, (३३५) जगत्प्रिया- जगत्की प्रिया करुणामयी देवी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥५३॥

(३३६) जातरूपमयी- स्वर्णमण्डित श्रृङ्गारसामग्रीले सजिएकी- (३३७) जिह्वा- प्रलयकालमा जगत्लाई ग्रस्त गर्ने परमात्माकी जिह्वा (जिब्रो) बनेर महाकालीका रूपमा प्रकट हुनुहुने, (३३८) जानकी- राजा जनककी पुत्री सीताका रूपमा लीला गर्नुहुने, (३३९) जगती- त्रिलोकीका रूपमा प्रकट भई जीवजगत्को धारण गर्नुहुने, (३४०) जरा- वृद्धावस्था बनेर सबैको आयु हरण गर्नुहुने, (३४१) जनित्री- सम्पूर्ण ब्रह्माण्ड पैदा गरी जीवहरूको चेष्टा हेर्नुहुने, (३४२) जह्नुतनया- जह्नुऋषिकी सुपुत्री भई उनकै पेटमा बास गर्नुहुने, (३४३) जगत्त्रयहितैषिणी- स्वर्ग, मर्त्य र पातालको हित चाहनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥५४॥

(३४४) ज्वालावती- पृथिवीका अनेक पवित्र स्थानहरूमा ज्वालादेवीका रूपमा प्रकट हुनुहुने, (३४५) जपवती- अखण्डरूपमा सदाशिव परमात्माको मन्त्र जप गर्नुहुने, (३४६) ज्वालघ्नी- संसारको सन्तापको ज्वाला मेटाउनुहुने, (३४७) जितविष्टपा- आफ्नो दिव्य गोलोकधामद्वारा स्वर्ग सौन्दर्य परास्त गर्नुहुने, (३४८) जिह्वाक्रान्तमहाज्वाला- आफ्नो जिब्रोद्वारा प्रलयाग्निको महाज्वालालाई पिउनुहुने, (३४९) जाग्रती- सर्वत्र चिदानन्दमयी बनेर जागृत रहनुहुने, (३५०) ज्वलदैवता- प्रकाशमय दैवका रूपमा रहेकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥५५॥

(३५१) ज्वलन्ती- ब्रह्मतेजले बलिरहेकी, (३५२) ज्वलदा- शत्रुलाई सन्ताप र सज्जनलाई प्रकाश प्रदान गर्नुहुने, (३५३) ज्येष्ठा- लक्ष्मीकी दिदी ज्येष्ठा ( दरिद्रता) का रूपमा प्रकट हुनुहुने, (३५४) ज्याघोषास्फोटदिङमुखा- समरभूमिमा दुर्जेय दानवहरूसँग युद्ध गर्दा धनुको ताँदोको घोर ध्वनिद्वारा चारै दिशालाई शब्दायमान तुल्याउनुहुने, (३५५) जम्भनी- पुत्र पैदा गर्न परमात्मा शिवसँग एकान्तवास गर्नुहुने, (३५६) जृम्भिणी- जृम्भा- हाइ गरी संसारलाई आफूभित्र समाहित गर्नुहुने, (३५७) जृम्भा- परमात्माको जृम्भा (हाइ) बनेर रहनुभएकी, (३५८) ज्वलन्मारीककुञ्जला- धपधप बलिरहेको महामारीको समयमा जगत्को रक्षाका लागि काकाकुल बनी परमात्मासँग करुणाजलको चाहना गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥५६॥

(३५९) झिल्लिकागणनिर्घोषा- झ्याउँकिरीको समूह कराएझैं गम्भीर घोष गर्नुहुने, (३६०) झञ्झामारुतवेगिनी- झ्याँझ्याँ शब्द गर्दै आएको हुरी बतासको जस्तो तीव्र वेग भएकी भगवती, (३६१) झल्लरीवाद्यकुशला- झ्याली बाजा बजाउन कुशल, (३६२) झषरूपा- माछीका रूपमा रही लीला गर्नुहुने, (३६३) झषध्वजा- कामदेवलाई जीवन्त तुल्याई शिवसँग सहवास गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥५७॥

टङ्कबाणसमायुक्ता टङ्किणी टङ्कवेगिनी। टङ्कीकृतगुणाशेषा टङ्कनीयमहोदरा ॥५८॥
टङ्कारकारिणी देवी टट्टशब्दनिनादिनी। डाकिनी डामरी डिम्भा डुण्डुभानैकवर्जिता ॥५९॥
डामरीतन्त्रमार्गस्था डमड्डमरुवादिनी। डिण्डीरविहसा डिम्भा डोलक्रीडापरायणा ॥६०॥
ढुण्ढिविघ्नेशजननी ढक्काहस्ता ढिरिप्रिया। त्रिप्रिया ज्ञानदाशेषा तरुणी तरुणीत्रयी ॥६१॥
त्रिगुणा त्रिपदा तन्त्री तुलसी तुरगासना। त्रिविक्रमपदाक्रान्ता तुरीयपदगामिनी ॥६२॥
तरुणादित्यसङ्काशा तामसी तुहिनाश्रया। त्रिकालज्ञानसम्पन्ना त्रिवली त्रिविलोचना ॥६३॥

---

(३६४) टङ्कबाणसमायुक्ता- हातमा टँकी, खन्ती र बाण लिनुभएकी, (३६५) टङ्किणी- ज्ञानास्त्रद्वारा अज्ञानरूप पत्थर फोर्नुहुने, (३६६) टङ्कवेगिनी- घुएँत्रो समान वेग भएकी, (३६७) टङ्कीकृतगुणाशेषा- आफ्नो धनुको ताँदोलाई टङ्कारमय तुल्याउनुहुने, (३६८) टङ्कनीयमनोहरा- चाँदीको सिक्काझैँ उज्ज्वल स्वरूपले सुहाएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥५८॥

(३६९) टङ्कारकारिणीदेवी- महिषासुर आदि असुरहरूसँग युद्ध गर्न धनुको टङ्कार गर्नुहुने भगवती दुर्गा देवी, (३७०) टट्टशब्दनिनादिनी- युद्धको आवेगमा मुखबाट टट्ट-टट्ट शब्द घन्काउनुहुने, (३७१) डाकिनी- तन्त्रशास्त्रअनुसार डाइनी बनेर प्रकट हुनुहुने, (३७२) डामरी- तान्त्रिक चमत्कारले सबैलाई चमत्कृत तुल्याउनुहुने, (३७३) डिम्भा- बाल्यावस्थामा रहनुहुने, (३७४) डुण्डुभानेकवर्जिता- डुण्डुभ सर्प अर्थात् निर्विष सर्पलेझैँ डराउन मात्र दिएर जगत् लाई सन्मार्गमा ल्याउनुहुने र विषधारीहरूलाई वर्जना गरी सबैको रक्षा गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥५९॥

(३७५) डामरीतन्त्रमार्गस्था- डामरीतन्त्रको पद्धतिमा रही साधकहरूको कल्याण गर्नुहुने, (३७६) डमड्डमरुवादिनी- माहेश्वरी शक्तिका रूपमा रही डम्डम् ध्वनि गर्ने डमरु बजाउनुहुने, (३७७) डिण्डीरविहसा- फिंजझैँ सेतो हाँसो हाँस्नुहुने, (३७८) डिम्भा- बालस्वभाव भएकी, (३७९) डोलक्रीडापरायणा- झुलामा झुल्न रुचाउनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥६०॥

(३८०) ढुण्ढिविघ्नेशजननी- श्री ढुण्ढिराज गणेशकी माता, (३८१) ढक्काहस्ता- हातमा डमरु लिनुहुने, (३८२) ढिरिप्रिया- प्राणीहरूलाई माया गर्नुहुने, (३८३) त्रिप्रिया- ब्रह्मा, विष्णु र महेशहरूकी प्यारी, (३८४) ज्ञानदा- ज्ञान प्रदान गर्नुहुने, (३८५) अशेषा- सम्पूर्ण ब्रह्माण्डका रूपमा रहनुभएकी, (३८६) तरुणी- युवतीका रूपमा रहनुहुने, (३८७) तरुणीत्रयी- महाकाली, महालक्ष्मी र महासरस्वतीका रूपमा रहनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥६१॥

(३८८) त्रिगुणा- सत्त्व, रज र तमनामक तीन गुणकी स्वामिनी, (३८९) त्रिपदा- स्वर्ग, मर्त्य, पाताल गरी तीन पद (स्थान) मा रहनुहुने, (३९०) तन्त्री- वीणाका रूपमा रही सङ्गीतद्वारा जगत्लाई मोहित गर्नुहुने, (३९१) तुलसी- तुलसीका रूपमा परिणत महालक्ष्मी, (३९२) तुरगासना- इन्द्राणीका रूपमा रही उच्चैःश्रवामा सवार हुनुहुने, (३९३) त्रिविक्रमपदाक्रान्ता- भगवान् वामनको तीन पाउद्वारा नापिएकी भुवनत्रयीका रूपमा विराजमान, (३९४) तुरीयपदगामिनी- ब्रह्मपदमा प्राप्त भई सुहाउनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥६२॥

(३९५) तरुणादित्यसङ्काशा- मध्याह्नको सूर्यसमान तेजोमयी, (३९६) तामसी- महाकालीका रूपमा तमोमयी, (३९७) तुहिनाश्रया- हिमालमा रही तपस्या गर्नुभएकी पार्वती, (३९८) त्रिकालज्ञानसम्पन्ना- भूत, भविष्य र वर्तमानका सबै विषय जान्नुहुने, (३९९) त्रिवली- नारी सौन्दर्यको सूचक त्रिवली रेखामा तीन देवीका रूपमा रहेकी, (४००) त्रिविलोचना- शाङ्करी रूपमा रहँदा तीन नयनले सुहाएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥६३॥

त्रिशक्तिस्त्रिपुरा तुङ्गा तुरङ्गवदना तटी । तिमिङ्गिलगिला तीव्रा त्रिस्रोतास्तामसार्दिनी ॥६४॥
तन्त्रा तन्त्रविशेषज्ञा तनुमध्या त्रिपिष्टपा । त्रिसन्ध्या त्रिस्तनी तोषा तास्था तालप्रयातिनी ॥६५॥
ताटङ्किनी तुषाराभा तुहिनाचलवासिनी । तन्तुजालसमायुक्ता तारहारावलिप्रिया ॥६६॥
तिलकर्मीप्रिया तीर्था तमालकुसुमाकृतिः । तारका त्रिपुरा तन्वी त्रिशङ्कुपरिवारिता ॥६७॥
तत्त्वोदरी तिलाभासा ताटङ्कोपरिशोभिता । त्रिजटा तैत्तिरी तृष्णा त्रिविधा तरुणाकृतिः ॥६८॥

---

(४०१) त्रिशक्ति- महाकाली, महालक्ष्मी र महासरस्वतीका रूपमा विराजमान हुनुभएकी, (४०२) त्रिपुरा- त्रिपुरासुरका तीन पुरलाई आफूमा समाहित गर्नुहुने अथवा सत्यलोक, कैलास र वैकुण्ठनामक तीन पुरमा राज गर्नुहुने, (४०३) तुङ्गा- सर्वोच्च शक्तिका रूपमा विराजमान, (४०४) तुरङ्गवदना- हयग्रीव अवतार लिने विष्णुकी सहचारिणी, (४०५) तटी- नदी वा समुद्रको तट सुहाएझैँ परब्रह्मको तटका रूपमा सुहाएकी, (४०६) तिमिङ्गिलगिला- तिमिङ्गिलनामक माछालाई सुलुक्क निल्ने विशाल माछोका रूपमा रहेकी, (४०७) तीव्रा- अत्यन्त ठूलो वेगले लोकोपकारमा लाग्नुहुने, (४०८) त्रिस्रोताः- स्वर्ग, पृथिवी र पाताल गरी तीन ठाउँमा विभिन्न नामबाट बग्ने त्रिपथगा गङ्गा, (४०९) तामसार्दिनी- तमोगुणी दुराचारीहरूको नाश गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु॥६४॥

(४१०) तन्त्रा- संसारको विस्तार गर्नुहुने, (४११) तन्त्रविशेषज्ञा- तन्त्रशास्त्रकी विशेष ज्ञाता, (४१२) तनुमध्या- कमर छिनिएकी दिव्य सुन्दरीका रूपमा विराजमान, (४१३) त्रिपिष्टपा- स्वर्गका रूपमा प्रकट भएकी, (४१४) त्रिसन्ध्या- प्रातः, सन्ध्या, मध्याह्न, सन्ध्या र सायंसन्ध्याका रूपमा रहेकी अथवा गायत्री, सावित्री र सरस्वतीका रूपमा रहेकी, (४१५) त्रिस्तनी- त्रिपदा गायत्रीका रूपमा रहेकी, (४१६) तोषा- सन्तुष्टिका रूपमा रहेकी, (४१७) तास्था- अर्थात् अमृतपान गर्ने कार्यमा आस्था राख्नुहुने, (४१८) तालप्रपातिनी- सङ्गीतका स्वरतालमा आफूलाई निमग्न गराउनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु॥६५॥

(४१९) ताटङ्किनी- सुवर्णमय कर्णालङ्कार धारण गर्नुहुने, (४२०) तुषाराभा- हिमोज्ज्वल श्वेतकान्तिले सुहाएकी, (४२१) तुहिनाचलवासिनी- हिमालयको कैलासमा शिवप्रिया पार्वतीका रूपमा निवास गर्नुहुने, (४२२) तन्तुजालसमायुक्ता- संसाररूप तन्तुको जाल हातमा लिएर जीवहरूलाई कर्मानुसार भोग भोगाउनुहुने, (४२३) तारहारावलिप्रिया- निर्मलहारपङ्क्ति धारण गर्न मन पराउनुहुने, (४२४) तिलपर्णप्रिया- चन्दनलेप मन पराउनुहुने, (४२५) तीर्था- पुण्य तीर्थका रूपमा रहनुभएकी, (४२६) तमालकुसुमाकृतिः- तेजपात अथवा सतिशालवृक्षको फूलझैँ सुन्दर आकार भएकी, (४२७) तारका- ताराका रूपमा चम्किनुहुने अथवा ॐकारका रूपमा रहनुहुने, (४२८) त्रिपुरा- त्रिपुरसुन्दरीका रूपमा विराजमान, (४२९) तन्वी- पातली सुन्दरीका रूपमा सुहाउनुभएकी, (४३०) त्रिशङ्कुपरिवारिता- विरालोलाई वरिपरि राखेर भ्रमण गर्नुहुने तान्त्रिक देवीका रूपमा रहेकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु॥६६-६७॥

(४३१) तत्त्वोदरी- आफ्नो हृदयमा २४ तत्त्व, २८ तत्त्व, २६ तत्त्व, २५ तत्त्व, १७ तत्त्व, १६ तत्त्व, १३ तत्त्व धारण गर्नुहुने अथवा गुरुतत्त्व, मन्त्रतत्त्व, मनस्तत्त्व, देवतत्त्व, ध्यानतत्त्व धारण गर्नुहुने, (४३२) तिलाभासा- आँखाको नानीझैँ सबैमा महत्त्वपूर्ण भई रहनुभएकी, (४३३) ताटङ्कोपरिसंस्थिता- स्वर्णसिंहासनमा विराजमान, (४३४) त्रिजटा- बेलको वृक्षका रूपमा रहेकी, (४३५) तैत्तिरी- तित्राहरूले पान गरेको कृष्णयजुर्वेदका रूपमा रहेकी, (४३६) तृष्णा- प्राणीमात्रका हृदयमा वासनातृप्तिका लागि तिर्सनाका रूपमा रहेकी, (४३७) त्रिविधा- तामसी, राजसी र सात्त्विकी गरी ३ शक्तिका रूपमा रहेकी, (४३८) तरुणाकृतिः- सधैँ युवतीका रूपमा रहनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु॥६८॥

तप्तकाञ्चनसंकाशा तप्तकाञ्चनभूषणा। त्र्यम्बका च त्रिवर्णा च त्रिकालज्ञानदायिनी ॥६९॥
तर्पणा तृप्तिदा तृप्ता तामसी तुम्बुरुस्तुता। तार्क्ष्यस्था त्रिगुणाकारा त्रितुङ्गी तनुवल्लरी ॥७०॥
थकारधारिणी थान्ता दोहिनी दीनवत्सला। दानवान्तकरी दुर्गा दुर्गासुरनिबर्हणी ॥७१॥
देवकी देवमाता च द्रौपदी दुन्दुभिस्वना। देवयानी दुरावासा दरिद्रच्छेदिनी दिवा ॥७२॥
दामोदरप्रिया दीप्ता दण्डिनी देवपूजिता। दण्डकारण्यनिलया देवतादित्यरूपिणी ॥७३॥
देववन्द्या दिविषदा द्वेषिणी दानवाकृतिः। दीनानाथस्तुता दीक्षा दिग्वासा देवमोहिनी ॥७४॥

---

(४३९) तप्तकाञ्चनसंकाशा– तपाएको सुनझैँ चहकिलो स्वरूपले सुहाएकी, (४४०) तप्तकाञ्चनभूषणा– तपाएको सुनको गहनाले सुहाएकी, (४४१) त्र्यम्बका– तीन नयनले युक्त शाङ्करीका रूपमा रहेकी, (४४२) त्रिवर्णा– सेतो, रातो र नीलो वर्णले सुहाएकी, (४४३) त्रिकालज्ञानदायिनी– भूत, भविष्य र वर्तमानकालमा विभिन्न रूप लिएर भक्तहरूलाई ज्ञान दिनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥६९॥

(४४४) तर्पणा– ज्ञानामृत पियाएर सबै भक्तहरूलाई तृप्त तुल्याउनुहुने, (४४५) तृप्तिदा– सबै भक्तहरूलाई सात्त्विक वासनाअनुसारका उत्तम पदार्थ प्रदान गरी तृप्ति प्रदान गर्नुहुने, (४४६) तृप्ता– भुवनेश्वर परमात्माको साहचर्यले तृप्त भएकी भुवनेश्वरी, (४४७) तामसी– महाकालीका रूपमा रही तमोगुणको आश्रय लिएर दुर्जनदलन गर्नुहुने, (४४८) तुम्बुरुस्तुता– तुम्बुरु गन्धर्वद्वारा स्तुति गरिएकी, (४४९) तार्क्ष्यस्था– वैष्णवी स्वरूप लिएर गरुडमाथि सवार हुनुहुने, (४५०) त्रिगुणाकारा– तीन गुणद्वारा साकाररूप धारण गर्नुहुने, (४५१) त्रितुङ्गी– तीनै कालमा सर्वोच्च शक्तिका रूपमा रहेकी, (४५२) तनुवल्लरी– लताझैँ पुष्पित र फलित दिव्य देहलता धारण गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥७०॥

(४५३) थकारधारिणी– मङ्गलमयी भगवती आरम्भदेखि अन्तसम्म मङ्गलकार्यमा प्रवृत्त हुनुहुने, (४५४) थान्ता– आरम्भदेखि अन्तसम्म मङ्गलकार्य धारण हुनुहुने, (४५५) दोहिनी– धर्तीभित्र रहेका समस्त रत्नहरूको दोहन गर्नुहुने, (४५६) दीनवत्सला– दीनदुःखीहरूमाथि वात्सल्यवर्षा गर्नुहुने, (४५७) दानवान्तकरी दुर्गा– दानवहरूको संहार गर्नुहुने दुर्गा भगवती, (४५८) दुर्गासुरनिबर्हिणी– दुर्गमासुरको संहार गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥७१॥

(४५९) देवकी– श्रीकृष्णकी माता, (४६०) देवमाता– देवताहरूकी माता अदिति नै देवकी बनी अवतीर्ण भएकी, (४६१) द्रौपदी– पाण्डवप्रिया द्रौपदीका रूपमा प्रकट हुनुभएकी, (४६२) दुन्दुभिस्वना– नगाड्राकोझैँ स्वर व्यक्त गर्नुहुने, (४६३) देवयानी– शुक्राचार्यकी सुपुत्री देवयानीका रूपमा प्रकट हुनुभएकी, (४६४) दुरावासा– जसको धाममा सजिलै पुग्न सकिँदैन, त्यस्ती भुवनेश्वरी, (४६५) दारिद्र्यच्छेदिनी– भक्तहरूको गरीवी नाश गर्नुहुने, (४६६) दिवा– दिनका रूपमा प्रकट भई सबैलाई कर्ममा लगाउनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥७२॥

(४६७) दामोदरप्रिया– भगवान् श्रीकृष्णकी प्रिया राधाका रूपमा रहनुभएकी, (४६८) दीप्ता– आत्मदीप्त भई रहनुहुने, (४६९) दण्डिनी– कर्मफल प्रदान गर्ने हेतुले न्यायको दण्ड धारण गर्नुहुने, (४७०) देवपूजिता– देवताहरूबाट पूजा गरिनुभएकी, (४७१) दण्डकारण्यनिलया– रामवनवासकालमा दण्डकारण्यवासिनी सीताका रूपमा रहनुभएकी, (४७२) देवता– देवताका रूपमा व्यक्त हुनुहुने, (४७३) आदित्यरूपिणी– सूर्य, इन्द्र आदि अदितिका सन्तानका रूपमा प्रकट हुनुभएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥७३॥

(४७४) देववन्द्या– देवताहरूद्वारा वन्दनीया भगवती, (४७५) दिविषदा– स्वर्गमा सुहाउनुहुने, (४७६) द्वेषिणी– दुष्कर्म गर्नेहरूसँग द्वेष गर्नुहुने, (४७७) दानवाकृतिः– दुष्टदलन गर्ने कार्यमा दानवसमान घोर आकार ग्रहण गर्नुहुने, (४७८) दीनानाथस्तुता– दीन, अनाथ एवं दुःखीहरूद्वारा स्तुति गरिएकी, (४७९) दीक्षा– पूजा, संस्कार, गुरुमन्त्र, यज्ञारम्भमा गरिने क्रिया, देवताविशेषको विशेष मन्त्र ग्रहण गर्ने पावन क्रिया जसलाई स्मार्तदीक्षा, मानसिक दीक्षा, यौगिकी दीक्षा, आदिका रूपमा चिनिन्छ, त्यस्तो दीक्षाकर्मका रूपमा रहेकी, (४८०) दिग्वासाः– शाङ्करी रूपमा रहँदा पूर्वादि दिशालाई नै वस्त्रका रूपमा धारण गर्नुहुने, (४८१) देवमोहिनी– समुद्रमन्थनकालमा लक्ष्मीका रूपमा प्रकट भई सबै देवतालाई मुग्ध तुल्याउनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥७४॥

धात्री धनुर्धरा धेनुर्धरणी धर्मधारिणी। धुरन्धरधराधारा धनदा धान्यदोहिनी ॥७५॥
धर्मशीला धनाध्यक्षा धनुर्वेदविशारदा। धृतिधन्या धृतिपदा धर्मराजप्रिया ध्रुवा ॥७६॥
धूमावती धूमकेशी धर्मशास्त्रप्रवर्त्तिनी। नन्दा नन्दप्रिया नुन्ना नुन्नता नन्दनात्मिका ॥७७॥
नर्म्मदा नलिनी नीला नीलकण्ठसमाश्रया। नारायणप्रिया नित्या निर्म्मला निर्गुणा निधिः ॥७८॥
निराधारा निरुपमा नित्यशुद्धा निरञ्जना। नादबिन्दुकलातीता नादबिन्दुकलात्मिका ॥७९॥

---

(४८२) धात्री- जगत्की आमाका रूपमा रही त्यसको रक्षा गर्नुहुने अथवा अमलाका रूपमा रही ओखती बनेर रोगीहरूको कल्याण गर्नुहुने, (४८३) धनुर्धरा- शत्रुसंहारका लागि धनु धारण गर्नुहुने, (४८४) धेनुः- कामधेनुका रूपमा रही यज्ञसंस्कृतिको संवर्धन गर्नुहुने, (४८५) धरणी- पृथिवीका रूपमा रही जगत्को पालना गर्नुहुने, (४८६) धर्मधारिणी- अवतार लिएर वैदिक सनातन धर्मको धारण गर्नुहुने, (४८७) धुरन्धरधराधारा- पृथिवीको धुरी धारण गरी प्रमुख आधारका रूपमा रहनुहुने, (४८८) धनदा- कुबेरकी शक्ति कौबेरीका रूपमा रहनुहुने, (४८९) धान्यदोहिनी- पृथिवीमा धर्मको पवित्र धारा बगाएर पृथिवीको कोखबाट धान्य दोहन गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥७५॥

(४९०) धर्मशीला- धर्मलाई शीलका रूपमा प्रस्तुत गरी धार्मिक समाजको रचना गर्नुहुने, (४९१) धनाध्यक्षा- समस्त धनसम्पदाकी स्वामिनी, (४९२) धनुर्वेदविशारदा- धनुविद्यामा अत्यन्त निपुण, (४९३) धृतिधन्या- आफ्नो अनुपम धैर्यका कारण धन्य भएकी, (४९४) धृतिपदा- धैर्यको धाममा स्थिर भएकी, (४९५) धर्मराजप्रिया- धर्मराज यमको न्याय निष्पादनमा सहयोगिनी, (४९६) ध्रुवा- आफ्नो कर्तव्यमा अटल रहेकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥७६॥

(४९७) धूमावती- दश महाविद्या मध्ये एक धूमावती महाविद्याका रूपमा रहेकी, (४९८) धूमकेशी- धुवाँको रङ्गको केश धारण गर्नुहुने, (४९९) धर्मशास्त्रप्रवर्तिनी- धर्मशास्त्रको उपदेश दिनुहुने, (५००) नन्दा- सबैलाई आनन्द प्रदान गर्नुहुने अथवा नन्दा तिथिका रूपमा रहनुहुने, (५०१) नन्दप्रिया- नन्दवावाकी प्यारी यशोदा एवं देवकीका रूपमा विराजमान, (५०२) निद्रा- निद्रादेवीका रूपमा विराजमान, (५०३) नुन्नता- सबैको हृदयमा प्रेरणा बनेर रहेकी, (५०४) नन्दनात्मिका- आनन्दमय स्वरूपमा रहेकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥७७॥

(५०५) नर्मदा- मदशून्य सत्त्वगुणात्मक स्थितिमा विराजमान अथवा सुखदायिनी, (५०६) नलिनी- कमललताका रूपमा रहेकी अथवा गीताका रूपमा प्रसिद्ध भएकी, (५०७) नीला- नीलो तेज भएको ब्रह्मरूपमा रहेकी, नवनिधिमध्ये नीलनिधिका रूपमा रहेकी अथवा मङ्गलध्वनिका रूपमा रहेकी, (५०८) नीलकण्ठसमाश्रया- भगवान् नीलकण्ठ महादेवको आश्रय लिनुहुने अथवा नीलकण्ठ महादेवका लागि आश्रयका रूपमा रहनुभएकी, (५०९) नारायणप्रिया- भगवान् नारायणलाई मन पराउनुहुने, (५१०) नित्या- सनातनरूपमा रहेकी, (५११) निर्मला- मायाको मलबाट मुक्त भएकी, (५१२) निर्गुणा- गुणरहित आत्मरूपमा रहेकी, (५१३) निधिः- नवनिधिका रूपमा रहेकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥७८॥

(५१४) निराधारा- आफ्नै आधारमा प्रकाशमान, (५१५) निरुपमा- अद्वितीय, (५१६) नित्यशुद्धा- नित्य र शुद्ध भावमा रहेकी, (५१७) निरञ्जना- मायाको लेप नभएकी, (५१८) नादबिन्दुकलातीता- नाद, बिन्दु र कलाबाट पर रहेकी, (५१९) नादबिन्दुकलात्मिका- नाद, बिन्दु र कला अँगालेर जगल्लीला गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥७९॥

नारसिंही नगधरा नृवरा नागभूषणा । नरकक्लेशशमनी नारायणपदोद्भवा ॥८०॥
नीरवन्द्या निराकारा नारदप्रियकारिणी । नानाज्योतिःपदाख्याता निराधिर्निर्म्मलात्मिका ॥८१॥
नवसूत्रधरा नीतिर्निरुपद्रवकारिणी । नदजा नवरत्नाढ्या नैमिषारण्यवासिनी ॥८२॥
नवनीतप्रिया नारी नीलजीमूतनिस्वना । निमेषाद्या नदीरूपा नीरग्रीवा नरेश्वरी ॥८३॥
नानावरी निशंम्भघ्नी नागलोकनिवासिनी । नवजाम्बूनदप्रख्या नागलोकाधिदेवता ॥८४॥
नूपुरक्रान्तचरणा नरचित्तप्रमोदिनी । निमग्नदक्षनमिता निर्घातसमनिस्वना ॥८५॥

---

(५२०) नारसिंही– नृसिंह भगवान्‌की शक्तिका रूपमा रहेकी, (५२१) नगधरा– पर्वतलाई कुचमण्डलका रूपमा धारण गर्ने, (५२२) नृवरा– सबै मानिसहरूकी आराध्या, (५२३) नागभूषणा– माहेश्वरी स्वरूपमा रही नागलाई आभूषणका रूपमा प्रयोग गर्नुहुने, (५२४) नरकक्लेशशमनी– नारकीय कष्टनिवारण गर्नुहुने, (५२५) नारायणपदोदभवा– नारायणका पाउबाट निस्केकी हुँदा विष्णुपदी गङ्गाका रूपमा रहेकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥८०॥

(५२६) नीरवन्द्या– आफ्नो अमोघफलदायी पवित्र जलका कारण लोकवन्द्य गङ्गाजीका रूपमा रहेकी, (५२७) निराकारा– निराकार शुद्ध ब्रह्मरूपमा रहेकी, (५२८) नारदप्रियकारिणी– नारदलाई विभिन्न मायिक प्रपञ्चमा फसाएर तत्त्वबोध गराउनुहुने, (५२९) नानाज्योतिःपदाख्याता– अनेक किसिमका देवी, देवता र परब्रह्म परमात्माका ज्योतिर्मय धाममा तत्तत् शक्तिका रूपमा विख्यात भएकी, (५३०) निराधि– अमनीभावमा रहनुहुने हुँदा मानसिक पीडाबाट मुक्त हुनुभएकी, (५३१) निर्मलात्मिका– निर्मल आत्मरूपमा देदीप्यमान भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥८१॥

(५३२) नवसूत्रधरा– ब्रह्माणीका रूपमा रहँदा नवतन्तुमय यज्ञोपवीत धारण गर्नुहुने, (५३३) नीति– अध्यात्मनीति, व्यवहारनीति, आचारनीति, दण्डनीति, धर्मनीति आदिका रूपमा रहेकी, (५३४) नदजा– ब्रह्मपुत्रनदकै समीपमा कामाख्या भगवतीका रूपमा प्रकट भएकी, (५३५) नवरत्नाढ्या– साकार स्वरूपमा सौन्दर्याधान गर्न नवरत्नमय आभूषण धारण गर्नुहुने (५३६) नैमिषारण्यवासिनी– नैमिषारण्यको शक्तिपीठमा पीठेश्वरीका रूपमा विराजमान भएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥८२॥

(५३७) नवनीतप्रिया– कृष्णप्रिया गोपिनीका रूपमा कृष्णतृप्तिका लागि नवनीत अर्पण गर्नुहुने, (५३८) नारी– शत्रुका प्रति पनि उदात्त भावले भरिएकी, (५३९) नीलजीमूतनिस्वना– कालो बादलको घोर गर्जनसमान गर्जन गर्नुहुने, (५४०) निमेषाद्या– निमेष आदि कालकलाका रूपमा रहेकी, (५४१) नदीरूपा– गङ्गा गण्डकी आदि नदीको रूप लिनुहुने, (५४२) नीलग्रीवा– नीलकण्ठ शिवकी प्रिया, (५४३) नरेश्वरी– मानवमात्रकी आराध्या परमेश्वरी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥८३॥

(५४४) नानावरी– भक्तहरूलाई अनेक वरदान दिनुहुने, (५४५) निशुम्भघ्नी– दुष्ट दैत्य निशुम्भको संहार गर्नुहुने, (५४६) नागलोकनिवासिनी– नागमाताका रूपमा नागलोकमा निवास गर्नुहुने, (५४७) नवजाम्बूनदप्रख्या– नयाँ सुवर्णको उज्ज्वल कान्तिसमान कान्ति भएकी, (५४८) नागलोकाधिदेवता– नागलोककी अधिष्ठात्री देवताका रूपमा विराजमान भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥८४॥

(५४९) नूपुरक्रान्तचरणा– नूपुरले ढाकिएका चरणकमल धारण गर्नुहुने, (५५०) नरचित्तप्रमोदिनी– मानवचित्तलाई प्रसन्न तुल्याउनुहुने, (५५१) निमग्नदक्षनमिता– दक्षप्रजापतिको कुटिल नीतिलाई योगाग्निद्वारा प्राण परित्याग गरी डुबाउनुहुने, (५५२) निर्घातसमनिस्वना– परस्पर ठक्कर खाएर आकाशबाट भुइँमा खस्ने वायुको प्रचण्ड शब्दसमान आवाज भएकी (पवनः पवनाभिहतो गगनादवनौ यदा समापतति भवति तदा निर्घातः ... ॥) भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥८५॥

नन्दनोद्याननिलया निर्व्यूहोपरिचारिणी। पार्वती परमामोदा पञ्चब्रह्मात्मिका परा ॥८६॥
पञ्चकोशविनिर्मुक्ता पञ्चपातकनाशिनी। परचित्तविधानज्ञा पञ्चिका पञ्चरूपिणी ॥८७॥
पूर्णिमा परमा प्रीतिः परतेजोऽपकर्षिणी। पुराणी पौरुषी पुण्या पुण्डरीकनिभेक्षणा ॥८८॥
पातालतलनिर्मग्ना प्रीताप्रीतविवर्धिनी। पावनी पदनीहारा पेशला पाकशासना ॥८९॥
प्रजापतिपरिश्रान्ता पर्वतस्तनमण्डला। पद्मप्रिया पद्मसंस्था पद्माक्षी पद्मसम्भवा ॥९०॥
पद्मपत्रा पद्मपदा पद्मिनी प्रियभाषिणी। पशुपाशविनिर्मुक्ता पुरन्ध्री पुरशासनी ॥९१॥

---

(५५३) नन्दनोद्याननिलया– नन्दननामक बगैंचामा विहारका लागि निवास गर्नुहुने, (५५४) निर्व्यूहोपरिचारिणी– जगत्को प्रलय भएपछि शून्यमाथि ब्रह्मरूपिणी भई विचरण गर्नुहुने, (५५५) पार्वती– हिमालयनन्दिनी बनेर रहनुहुने, (५५६) परमामोदा– परमानन्दमयी, (५५७) पञ्चब्रह्मात्मिका– सद्योद्यात, अघोर, तत्पुरुष, वामदेव एवं ईशानरूप पञ्च मुखब्रह्मका रूपमा रहेकी, (५५८) परा– अध्यात्मविद्याका रूपमा रहेकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥८६॥

(५५९) पञ्चकोशविनिर्मुक्ता– अन्नमयकोश, प्राणमयकोश, मनोमयकोश, विज्ञानमयकोश र आनन्दमयकोशबाट मुक्त भई ब्रह्मरूपमा रहेकी, (५६०) पञ्चपातकनाशिनी– ब्रह्महत्या, मदिरापान, चोरी, गुरूपत्नीगमन र उक्त ४ किसिमका पाप गर्ने पापीहरूको संसर्गजस्ता ५ महापातक नाश गर्नुहुने, (५६१) परचित्तविधानज्ञा– अरुको चित्तको गुप्त रहस्य जान्नुहुने, (५६२) पञ्चिका– ऐतरेय ब्राह्मणद्वारा प्रतिपाद्य ब्रह्मरूपा भगवती, (५६३) पञ्चरूपिणी– शिव, शक्ति, सूर्य, विष्णु र गणेशरूपमा व्यक्त भएकी अथवा पार्वती, राधा, लक्ष्मी, सरस्वती र सावित्री गरी ५ प्रकृतिका रूपमा रहेकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥८७॥

(५६४) पूर्णिमा– पूर्णचन्द्र भएको पूर्णिमा तिथिका रूपमा रही देवताहरूलाई तृप्ति प्रदान गर्नुहुने, ५६५) परमा प्रीतिः– परमप्रीति यद्वा अनपायिनी भक्तिका रूपमा रहनुभएकी, (५६६) परतेजोऽपकर्षिणी– शत्रुपक्षको तेजरूपाकर्षण गरी शत्रुसंहार गर्नुहुने, (५६७) पुराणी– सबैभन्दा पूर्ववर्ती भई सृष्टिसञ्चालन गरिरहनुभएकी, (५६८) पौरुषी– पुरुषार्थहरूकी स्वामिनी, (५६९) पुण्या– पुण्यात्मा, (५७०) पुण्डरीकनिभेक्षणा– श्वेतकमलसमान उज्ज्वल नयन भएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥८८॥

(५७१) पातालतलनिर्मग्ना– पृथिवीको रूप लिंदा पातालमा डुबेकी, (५७२) प्रीत्यप्रीतिविवर्धिनी– मानवहृदयमा आवश्यकताअनुसार प्रीतितत्त्व र द्वेषतत्त्व बढाउनुहुने, (५७३) पावनी– आफ्नो कृपादृष्टिद्वारा सबैलाई पवित्र तुल्याउनुहुने, (५७४) पदनीहारा– हिमशीतल चरणकमलद्वारा शोभायमान, (५७५) पेशला– अत्यन्त सुकुमार एवं सुन्दर अङ्ग-प्रत्यङ्ग भएकी, (५७६) पाकशासना– इन्द्राणीका रूपमा रहेकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥८९॥

(५७७) प्रजापतिपरिश्रान्ता– ब्रह्माजीद्वारा प्रकट भई, उहाँद्वारा नै सताइएकी, (५७८) पर्वतस्तनमण्डला– पृथिवीरूपमा रहँदा पर्वतहरूलाई स्तनमण्डलका रूपमा धारण गर्नुहुने, (५७९) पद्मप्रिया– कमलपुष्पलाई मन पराउनुहुने, (५८०) पद्मसंस्था– कमलमा बस्नुहुने हुँदा कमलासना वा पद्मासना नामबाट विख्यात हुनुभएकी, (५८१) पद्माक्षी– कमलसुन्दर नयनयुगलले सुहाएकी, (५८२) पद्मसम्भवा– कमलबाट उत्पन्न ब्रह्माजीकी ब्रह्माणी शक्ति भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥९०॥

(५८३) पद्मपत्रा– कमलपत्रमा निवास गर्नुहुने, (५८४) पद्मपदा– कमलझैँ कोमल चरणयुगल भएकी, (५८५) पद्मिनी– सामुद्रिक शास्त्रअनुसार कमलका पातजस्ता आँखा हुने, कमलको जस्तो बासना आउने, लामा लामा केश हुने, शरीर पातलो हुने, स्तन पुष्ट र जोरिएका हुने, मधुर बोली हुने, नाचगान मन पराउने उत्तम नारीका रूपमा प्रकट हुनुभएकी अथवा कमलको समूह वा कमललताका रूपमा प्रकट हुनुहुने, (५८६) प्रियभाषिणी– मीठो बोल्नुहुने, (५८७) पशुपाशविनिर्मुक्ता– जीवलाई बन्धनमा पार्ने माया यद्वा अज्ञानबाट मुक्त हुनुभएकी, (५८८) पुरन्ध्री– पति, पुत्र आदि परिवारले सुहाएकी सौभाग्यवती नारीका रूपमा घरघरमा गृहलक्ष्मी बन्नुहुने, (५८९) पुरशासनी– त्रिपुरमाथि शासन गर्नुहुने भगवान् शिवकी प्रियतमा भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥९१॥

पतिव्रता पवित्राङ्गी पुष्पवासपरायणा। पुष्करा पुरुषा पर्वा पारिजातसुमप्रिया ॥९२॥
प्रज्ञावतीसुता पौत्री पत्रपूजा पयस्विनी। पट्टिपाशधरा पंक्तिः पितृलोकप्रदायिनी ॥९३॥
पुराणी पुण्यशीला च प्रणतार्त्तिविनाशिनी। प्रद्युम्नजननी प्रौढा पितामहपरिग्रहा ॥९४॥
पुण्डरीकपुरावासा पुण्डरीकनिभानना ॥९५॥
पृथुजङ्घा पृथुभुजा पृथुपादा पृथूदरी। प्रवालशान्ता पिङ्गाक्षी पीतवासा पिपीलिका ॥९६॥
पर्जन्यभीमरूपा च पर्जन्याधिकशीतला। पुराणवेदगम्या च पुराणवेदवन्दिता।
पद्मरागप्रतीकाशा पद्मरागस्वरूपिणी ॥९७॥

---

(५९०) पतिव्रता- पतिव्रता नारीका रूपमा रहनुहुने (५९१) पवित्राङ्गी- पवित्र अङ्गसौन्दर्य धारण गर्नुहुने, (५९२) पुष्पवासपरायणा- पुष्पहरूका बीचमा सौन्दर्य बनेर प्रस्फुटित हुनुहुने, (५९३) पुष्करा- पुष्करतीर्थका रूपमा रहनुभएकी अथवा कमलका रूपमा रहनुभएकी, (५९४) पुरुषा- प्राणीमात्रको हृदयपुरीमा निवास गर्नुहुने, (५९५) पर्वा- उत्सवका रूपमा प्रकट हुनुहुने अथवा अमावास्या, पूर्णिमा, सङ्क्रान्ति, ग्रहण आदि पुण्यकालका रूपमा व्यक्त हुनुहुने, (५९६) पारिजातसुमप्रिया- पारिजात वृक्षका पुष्प मन पराउनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥९२॥

(५९७) प्रज्ञावतीसुता- प्रज्ञावतीनामक पौराणिक नारीकी पुत्रीका रूपमा पैदा हुनुभएकी, (५९८) पौत्री- प्रत्येक घरमा नातिनी भई पैदा हुनुहुने, (५९९) पत्रपूजा- पत्र-पुष्प आदिबाट पूजा गरिनुहुने, (६००) पयस्विनी- दुधारु गाईका रूपमा पैदा भई यज्ञको सम्पादन गर्नुहुने, (६०१) पट्टिपाशधरा- बन्चरो एवं पाश धारण गर्नुहुने, (६०२) पङ्क्ति- पङ्क्तिनामक छन्दका रूपमा रहनुहुने, (६०३) पितृलोकप्रदायिनी- स्वधा शक्ति बनेर पितृभक्तहरूलाई पितृलोक पुऱ्याउनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥९३॥

(६०४) पुराणी- सर्वप्राचीन, (६०५) पुण्यशीला- पुण्यकर्ममा नित्य प्रवृत्त हुनुहुने, (६०६) प्रणतार्तिविनाशिनी- शरणागत भक्तहरूका मनमा व्यथा निवारण गर्नुहुने, (६०७) प्रद्युम्नजननी- प्रद्युम्नकी आमा रुक्मिणीका रूपमा प्रकट हुनुभएकी, (६०८) प्रौढा- ३६ वर्षदेखि ५० वर्षको उमेरका महिलाका रूपमा रहनुहुने, (६०९) पितामहपरिग्रहा- ब्रह्माजीकी पत्नी सरस्वतीका रूपमा प्रकट हुनुहुने, (६१०) पुण्डरीकपुरावासा- सेतो कमलको वनमा निवास गर्नुहुने, (६११) पुण्डरीकनिभानना- सेतो कमलसमान नयन युगल धारण गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥९४-९५॥

(६१२) पृथुजङ्घा- स्थूल जङ्घा भएकी, (६१३) पृथुभुजा- मांसल भुजा भएकी, (६१४) पृथुपादा- ठूला-ठूला पाउ भएकी, (६१५) पृथूदरी- ठूलो पेट भएकी, (६१६) प्रवालशान्ता- नयाँ पालुवाझैँ शान्त र सुन्दर देखिनुहुने, (६१७) पिङ्गाक्षी- पहेँला नयनले सुहाएकी, (६१८) पीतवासा- बगलामुखीका रूपमा पहेँला बस्त्र धारण गर्नुहुने, (६१९) पिपीलिका- साना साना कमिलाका रूपमा पनि आफूलाई प्रकट गराउनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥९६॥

(६२०) पर्जन्यभीमरूपा- मेघझैँ भयङ्कर स्वरूप भएकी, (६२१) पर्जन्याधिकशीतला- बादलभन्दा शीतल शरीर भएकी, (६२२) पुराणवेदगम्या- पुराण र वेदद्वारा स्वरूप ज्ञान गर्न सकिने भगवती, (६२३) पुराणवेदवन्दिता- पुराण र वेदद्वारा वन्दना गरिएकी, (६२४) पद्मरागप्रतीकाशा- पद्मरागमणिझैँ रमणीय स्वरूपले सुहाएकी, (६२५) पद्मरागस्वरूपिणी- पद्मरागमणिकै स्वरूपमा रहेकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥९७॥

पद्माक्षी पद्मपत्राक्षी पद्ममालाविभूषिता। पाञ्चाली पञ्चनी पञ्चा पञ्चाननहृदयमोहिनी ॥९८॥

पञ्चकूटस्थिता प्राची पञ्चाननिवाहिनी। पाशिनी पाशहस्ता च पशुपाशविनाशिनी ॥९९॥

पशुपाशसमुच्छेदकारिणी पशुघातिनी। परश्वाभा पर्शुहस्ता च परलोकभयापहा ॥१००॥

फलिनी फलहस्ता च फलाफलफलप्रदा। फणिकङ्कणहस्ता च फणिनूपुरधारिणी ॥१०१॥

फुत्कारकारिणी फेरुः फुलिङ्गा च फुलिङ्गिनी। फलदा फलदात्री च फणिहस्ता फणामणिः ॥१०२॥

विश्वेश्वरी च विश्वासा विश्वपापविनाशिनी। विशालाक्षी विशालाक्षा विशालमुक्तिधारिणी ॥१०३॥

बिम्बाधरा बिम्बरूपा विश्वा विद्या विनोदिनी। वेदगम्या वेदवन्द्या वेदवेदाङ्गपारगा ॥१०४॥

---

(६२६) पद्माक्षी- कमलनयनी, (६२७) पद्मपत्राक्षी- कमलका पातझैँ सुन्दर नयन भएकी, (६२८) पद्ममालाविभूषिता- कमलको माला धारण गरी सुहाएकी, (६२९) पाञ्चाली- द्रौपदीका रूपमा अवतीर्ण भएकी, (६३०) पञ्चनी- जगत्को विस्तार गर्नुहुने, (६३१) पञ्चा- पञ्चदेवतामयी, (६३२) पञ्चाननहृदयमोहिनी- पञ्चमुख पशुपति परमेश्वरको हृदयलाई मोहित गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥९८॥

(६३३) पञ्चकूटस्थिता- पाँच ब्रह्मतत्त्वको मूल केन्द्रमा रहेकी, (६३४) प्राची- पूर्वदिशामा रही प्रथम प्रकाश छर्नुहुने, (६३५) पञ्चाननिवासिनी- दुर्गा बनेर सिंहमा सवार गर्नुहुने, (६३६) पाशिनी- मायापाश फैलाउनुहुने, (६३७) पाशहस्ता- हातमा मायापाश लिनुहुने, (६३८) पशुपाशविनशिनी- जीवहरूको अज्ञानरूप बन्धन काट्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥९९॥

(६३९) पशुपाशसमुच्छेदकारिणी- जीवहरूको मायारूप बन्धनलाई जरैदेखि उखेलेर फ्याँक्नुहुने, (६४०) पशुघातिनी- मानवजीवन पाएर पनि अज्ञानमा डुवी पशुतुल्य जीवन बिताउने जीवहरूलाई दण्ड दिन नरकमा पठाई यातना दिलाउनुहुने, (६४१) परर्शाया- संसारी जीव शरणागत भएमा तिनीहरूका पाश काट्ने बञ्चरो बन्नुहुने, (६४२) पर्शुहस्ता- हातमा बन्चरो लिनुहुने, (६४३) परलोकभयावहा- पापीहरूका लागि परलोकमा भय प्रदान गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१००॥

(६४४) फलिनी- प्रियङ्गु वृक्षका रूपमा रहनुभएकी वा धर्म, अर्थ, काम र मोक्ष फल धारण गर्नुहुने, (६४५) फलहस्ता- हातमा पुरुषार्थरूप फल धारण गर्नुहुने, (६४६) फलाफलफलप्रदा- पुण्य र पापका फल दिनुहुने, (६४७) फणिकङ्कणहस्ता- हातमा सर्पलाई बाला बनाई बेर्नुहुने, (६४८)फणिनूपुरवाहिनी- पाउमा सर्पलाई पाइजोका रूपमा धारण गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१०१॥

(६४९) फुत्कारकारिणी फेरुः- मुखबाट आगोको मुस्लो फ्याँक्दै हुइयाँ हुइयाँ स्वर गर्ने स्यालिनी, (६५०) फुलिङ्गा- आगाको फिलिङ्गो बनेर रहनुहुने, (६५१) फुलिङ्गिनी- आगोको फिलिङ्गो धारण गरी युद्धमा जानुहुने, (६५२) फलदा- शुभाशुभ कर्मका फल दिनुहुने, (६५३) फलदात्री- आफ्ना भक्तलाई प्रसादका रूपमा फल दिनुहुने, (६५४) फणिहस्ता- हातमा सर्प धारण गर्नुहुने, (६५५) फणामणिः- नागमणि धारण गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१०२॥

(६५६) विश्वेश्वरी- विश्वकी स्वामिनी, (६५७) विश्वासा- प्राणीहरूका हृदयमा विश्वासका रूपमा रहेकी, (६५८) विश्वपापविनाशिनी- विश्वका समग्र पाप नाश गर्नुहुने, (६५९) विशालाक्षी- काशी आदि ठाउँका शक्तिपीठहरूमा विशालाक्षी नामले रहनुभएकी, (६६०) विशालाक्षा- विशाल नयन युगलले सुहाउनुभएकी, (६६१) विशालमुक्तिधारिणी- अतुलनीय मुक्तितत्त्वलाई धारण गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१०३॥

(६६२) बिम्बाधरा- बाँबीको फलझैँ रातो अधरोष्ठले सुहाएकी, (६६३) बिम्बरूपा- परमात्मरूप बिम्बको प्रतिबिम्ब बनेकी, (६६४) विश्वा- विशाल ब्रह्माण्डका रूपमा रहेकी, (६६५) विद्याविनोदिनी- परमार्थ प्रदान गर्ने विद्यासँग विनोद गर्न मन पराउनुहुने, (६६६) वेदगम्या- वेदका तत्त्वमसि, अयमात्मा ब्रह्म, अहं ब्रह्मास्मि इत्यादि वाक्यद्वारा जानिनुहुने, (६६७) वेदवन्द्या- श्रुतिद्वारा वन्दनीया, (६६८) वेदवेदाङ्गपारगा- वेद र वेदका अङ्गहरूको अन्तःतलस्पर्शी ज्ञान गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१०४॥

वेदाङ्गी वेदरूपा च वेदमन्त्रस्वरूपिणी । वाशिनी वासिनी वश्या वसुदा वसुदायिनी ॥१०५॥
वसुदा वसुराध्या च वसुदानपरायणा । वासवी वासवाराध्या वामदेवविलासिनी ॥१०६॥
बहुदा बहुरूपा च बहुबाहुविलासिनी । बहुनेत्रा बहुलास्या बहुहस्ता बहुस्तना ॥१०७॥
बह्वा बह्वानना बाला बहुविघ्नविनाशिनी । वल्लवी वल्लवप्रीतिर्वलिनी बहुरूपिणी ॥१०८॥
बलाराध्या बलारातिर्बलवैरिनिषेविता । वाद्यप्रिया वाद्यलता वीणावादनतत्परा ॥१०९॥
वामदेवप्रिया वामी वासुदेवाभिवन्दिता । वारणा वारणाधारा वरवाटिविहारिणी ॥११०॥
वारण्या वरदा वन्या वनमालाविभूषणा । बलाका बालिनी वीरा वैद्यशास्त्रविशारदा ॥१११॥

---

(६६९) वेदाङ्गी– वेदाङ्गका रूपमा व्यक्त हुनुभएकी, (६७०) वेदरूपा– ज्ञानरूपिणी, ब्रह्मरूपिणी अथवा वेदरूपिणी, (६७१) वेदमन्त्रस्वरूपिणी– वेदका मन्त्रको स्वरूपमा रहनुहुने, (६७२) वाशिनी– पशुपक्षी आदिको आवाज गुनगुनाउनुहुने, (६७३) वासिनी– सुन्दर वस्त्र धारण गर्नुहुने, (६७४) वश्या– भक्तहरूको वशमा पर्नुहुने, (६७५) वसुदा– शन्तनु र गङ्गालाई वसुरूप पुत्र प्रदान गर्नुहुने, (६७६) वसुदायिनी– साधकहरूलाई दिव्य सम्पत्ति प्रदान गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१०५॥

(६७७) वसुदा– वसुहरूलाई अष्टवसुका रूपमा विशिष्ट स्थान दिनुहुने, (६७८) वसुराध्या– वसुहरूद्वारा आराधनीया, (६७९) वसुदानपरायणा– दैवी सम्पत्ति प्रदान गर्न तत्पर, (६८०) वासवी– वेदव्यासकी माता योजनगन्धाका रूपमा रहेकी, (६८१) वासवाराध्या– वसुपुत्रद्वारा आराध्या, (६८२) वामदेवविलासिनी– भगवान् वामदेव (शिव)की प्रिया पार्वती भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१०६॥

(६८३) बहुदा– भक्तहरूले चाहेभन्दा धेरै दिनुहुने, (६८४) बहुरूपा– अनेक रूपमा देखिनुहुने, (६८५) बहुबाहुविलासिनी– अनेक भुजा धारण गरी शत्रुसंहारको विलास गर्नुहुने, (६८६) बहुनेत्रा– अनेक नयन धारण गर्नुहुने, (६८७) बहुलास्या– अनेक मुख धारण गर्नुहुने, (६८८) बहुस्तना– अनेक स्तन भएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१०७॥

(६८९) बहुहस्ता– अनेक हातले सुहाएकी, (६९०) बहुस्मरणा– अनेक वस्तुको एकसाथ सम्झना गर्नुहुने, (६९१) बह्वानना– हजारौँ मुख भएकी, (६९२) बाला– सोह्र वर्षकी युवतीका रूपमा सुहाएकी, (६९३) बहुविघ्नविनाशिनी– अनेक विघ्नहरूको विनाश गर्नुहुने, (६९४) बल्लवी– गोपिनीका रूपमा रहनुभएकी, (६९५) बल्लवप्रीतिः– गोपकुमार श्रीकृष्णसँग प्रीति गर्ने राधाका रूपमा रहेकी, (६९६) बलिनी– शक्तिमती, (६९७) बहुरूपिणी– अनेक रूपमा प्रकट हुनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१०८॥

(६९८) बलाराध्या– बलदेवद्वारा आराधनीया, (६९९) बलारातिः– कारणवश वलदेवको शत्रुरूपमा रहनुभएकी, (७००) बलवैरिनिषेविता– वलरामका वैरीहरूद्वारा सेवा गरिएकी, (७०१) वाद्यप्रिया– वाद्यवादन रुचाउनुहुने, (७०२) वाद्यलता– वीणाका रूपमा रहनुभएकी, (७०३) वीणावादनतत्परा– वीणवादनमा तत्पर भएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१०९॥

(७०४) वामदेवप्रिया– भगवान् शिवकी प्रिया, (७०५) वामा– अत्यन्त सुन्दरी, (७०६) वासुदेवाभिनन्दिता– वासुदेवद्वारा अभिनन्दित राधारानीका रूपमा रहेकी, (७०७) वारणा– गजलक्ष्मीका रूपमा रहेकी, (७०८) वारणाधारा– कर्मलाई निषेध गर्ने आधारभूत श्रुतिका रूपमा रहेकी, (७०९) वरवाटीविहारिणी– नन्दन आदि उत्तम वाटिकारूमा विहार गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥११०॥

(७१०) वारण्या– आराध्य देवीका रूपमा मुटुमा राखी धारण गर्न योग्य, (७११) वरदा– वरदायिनी, (७१२) वन्या– वनकी सुषमा बनेर रहेकी अथवा जीवनतत्त्वका रूपमा रहेकी अथवा जलतत्त्वका रूपमा रहेकी, (७१३) वनमालाविभूषणा– अलङ्कारका रूपमा वनमाला धारण गर्नुहुने, (७१४) बलाका– उज्ज्वल बकपक्षीका रूपमा रहेकी, (७१५) बालिनी– चमरीका रूपमा रहेकी, (७१६) वीरा– पतिपुत्रवती नारीका रूपमा सुहाएकी, (७१७) वैद्यशास्त्रविशारदा– आयुर्वेद शास्त्रकी विदुषी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१११॥

वाराही वारणी वीरा वाक्पतिश्च वरप्रदा। वसुधा वसुपात्री च वसुवासुकिरूपिणी ॥११२॥
वाग्देवी वक्ररूपा च वेदवादेविनोदिनी। वन्दनीया वरारोहा वराङ्गी वरलोचना ॥११३॥
वरास्या वरहस्ता च वरदा वरशालिनी। वृन्दा वृन्दारकाराध्या वृन्दावनविहारिणी ॥११४॥
वरुणा वरुणाराध्या वरुणानन्ददायिनी। ब्रह्मरूपा ब्रह्ममूर्तिर्ब्रह्माणी ब्रह्मसंस्तुता ॥११५॥
ब्रह्मी ब्रह्ममयी ब्रह्मा ब्रह्मानन्दस्वरूपिणी। वैष्णवी विष्णुरूपा च विष्णुचित्तप्रियङ्करी ॥११६॥
विद्या विद्याधराराध्या विद्यामन्त्रस्वरूपिणी। विशदा विशदाचारा विशदानन्ददायिनी ॥११७॥
विपुला विपुलश्रोणी विपुलस्तनमण्डला। विमला विमलाङ्गी च विमलाचारसंस्थिता ॥११८॥

---

(७१८) वाराही- भगवान् वाराहकी शक्ति, (७१९) वारणी- दुष्कर्म गर्न निषेध गर्नुहुने, (७२०) वीरा- महिषासुर आदि दुष्टशत्रुसामु अनुपम वीरता प्रकट गर्नुहुने, (७२१) वाक्पतिः- बृहस्पतिका रूपमा प्रकट हुनुभएकी, (७२२) वरप्रदा- वर प्रदान गर्नुहुने, (७२३) वसुधा- पृथिवीका रूपमा रहनुभएकी, (७२४) वसुपात्री- सम्पूर्ण धनसम्पदाकी आधार, (७२५) वसुवासुकिरूपिणी- अष्टवसु र वासुकि नागका रूपमा रहेकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥११२॥

(७२६) वाग्देवी- सरस्वती, (७२७) वक्ररूपा- 'वामा' नामले प्रसिद्ध भएकी वा हातमा भक्तका लागि वर प्रसाद लिनुहुने, (७२८) वेदवादे विनोदिनी- वैदिक सिद्धान्तको चर्चा गरी मनोविनोद गर्नुहुने, (७२९) वन्दनीया- सबैद्वारा प्रणाम गर्न योग्य, (७३०) वरारोहा- ठूलो र आकर्षक नितम्ब भएकी, (७३१) वराङ्गी- उत्तम अङ्गप्रत्यङ्ग भएकी, (७३२) वरलोचना- उत्तम नयनले सुहाएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥११३॥

(७३३) वरास्या- उत्तम मुखमण्डलले सुहाएकी, (७३४) वरहस्ता- उत्तम हात भएकी, (७३५) वरदा- वरदान दिने, (७३६) वरशालिनी- उत्तम वर शिव परमात्माका साथ सुहाएकी, (७३७) वृन्दा- तुलसीका रूपमा रहेकी, (७३८) वृन्दारकाराध्या- देवताहरूद्वारा आराधनीया, (७३९) वृन्दावनविहारिणी- वृन्दावनमा राधाका रूपमा रही श्रीकृष्णसँग विहार गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥११४॥

(७४०) वरुणा- पश्चिम दिशाका रूपमा रहेकी, (७४१) वरुणाराध्या- पश्चिम दिशाका दिक्पाल वरुणद्वारा आराधनीया, (७४२) वरुणानन्ददायिनी- वरुणलाई आनन्द दिनुहुने, (७४३) ब्रह्मरूपा- ब्रह्मरूपमा रहेकी, (७४४) ब्रह्ममूर्तिः- ब्रह्मकी मूर्तिका रूपमा रहेकी, (७४५) ब्रह्मसंस्तुता- ब्रह्माजीद्वारा स्तुति गरिएकी ब्राह्मी शक्ति भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥११५॥

(७४६) ब्राह्मी- ब्रह्म परमात्माकी अनादि शक्ति, (७४७) ब्रह्ममयी- ब्रह्मरूपमा रहेकी, (७४८) ब्रह्मा- ब्रह्माका रूपमा रही सृष्टि गर्नुहुने, (७४९) ब्रह्मानन्दस्वरूपिणी- ब्रह्मानन्दकी रूपमा रहेकी, (७५०) वैष्णवी- भगवान् विष्णुकी शक्ति, (७५१) विष्णुरूपा- विष्णुका रूपमा रहेकी, (७५२) विष्णुचित्तप्रियङ्करी- विष्णुको चित्तलाई प्रसन्न र प्रीतिपूर्ण तुल्याउनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥११६॥

(७५३) विद्या- ज्ञानकी निधान विद्याका रूपमा रहनुभएकी, (७५४) विद्याधराराध्या- विद्याधरहरूकी आराध्या, (७५५) विद्यामन्त्रस्वरूपिणी- सिद्धविद्या, महाविद्या आदिका मन्त्रका रूपमा रहेकी, (७५६) विशदा- स्वच्छ स्वरूप भएकी, (७५७) विशदाचारा- स्वच्छ आचार भएकी, (७५८) विशदानन्ददायिनी- निर्मल ब्रह्मानन्द प्रदान गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥११७॥

(७५९) विपुला- विराट् रूप धारण गर्नुहुने, (७६०) विपुलश्रोणी- पृथुनितम्बिनी, (७६१) विपुलस्तनमण्डला- विशाल स्तनाभोग भएकी, (७६२) विमला- निर्मल स्वरूप भएकी, (७६३) विमलाङ्गी- निर्मल अङ्ग भएकी, (७६४) विमलाचारसंस्थिता- निर्मल आचार विचारमा रहेकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥११८॥

विशिष्टागम्यसुरतिर्वशिष्ठा वसुवेष्टिता। विकाशिनी विकाशाद्या विकचाम्बुजलोचना ॥११९॥
वशिष्ठी वारुणी विश्वा वैश्वानरप्रिया सदा। वाराणसीपराराध्या विश्वाविश्वस्वरूपिणी ॥१२०॥
भूतिर्भगवती भव्या भवानी भववल्लभा। भूतधात्री भूतमाता भूतिदा भूतिदायिनी ॥१२१॥
भवप्रिया भवानन्दा भवभीतिविनाशिनी। भीमा भीमस्वरूपा च भीमभूतगणावृता ॥१२२॥
भूषा भूषणरूपा च भुवनाभयकारिणी। भुवना भुवनाराध्या भाविनी भुवनेश्वरी ॥१२३॥
भेरुण्डा भैरवी भीमा भार्गवी भार्गवस्थिता। भयदा भयहन्त्री च भवनाथा भयङ्करी ॥१२४॥

---

(७६५) विशिष्टागम्यसुरतिः- विशिष्ट तर अगम्य परब्रह्मसँग अनुराग गर्नुहुने, (७६६) वशिष्ठा- वसिष्ठ ऋषिका रूपमा रहेकी, (७६७) वसुवेष्टिता- वसुहरूद्वारा घेरिएकी, (७६८) विकाशिनी- नित्य विकासमा प्राप्त हुने, (७६९) विकाशाद्या- परमात्माको प्रथम विकासका रूपमा रहेकी, (७७०) विकचाम्बुजलोचना- फुलेका कमलसमान नयनले सुहाएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥११९॥

(७७१) वाशिष्ठी- वशिष्ठ निर्मित श्रुतिसिद्ध पद्धतिका रूपमा रहेकी, (७७२) वारुणी- मदिराभैँ सबैलाई मायाको उन्मादमा पुऱ्याउनुहुने, (७७३) विश्वा- विराट्रूपधारिणी, (७७४) वैश्वानरप्रिया- अग्निकी प्रिय आराध्या, (७७५) वाराणसीपराराध्या- वाराणसीमा रही आत्मचिन्तन गर्नेहरूकी आराध्या, (७७६) विश्वाविश्वस्वरूपिणी- विराट् र सूक्ष्म शरीर धारण गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१२०॥

(७७७) भूतिः- ऐश्वर्यका रूपमा रहेकी, (७७८) भगवती- ऐश्वर्य, धर्म, यश, श्री, ज्ञान एवं विज्ञानले सुहाएकी, (७७९) भव्या- कल्याणी, (७८०) भवानी- शिवकी धर्मपत्नी, (७८१) भववल्लभा- शिवकी प्यारी, (७८२) भूतधात्री- प्राणीहरूकी रक्षिका- (७८३) भूतमाता- प्राणीहरूकी आमा, (७८४) भूतिदा- भक्तहरूलाई ऐश्वर्य दिनुहुने, (७८५) भूतिदायिनी- ऐश्वर्य दिने र दिलाउने काम गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१२१॥

(७८६) भवप्रिया- शिवकी प्रिया, (७८७) भवानन्दा- शिवसान्निध्यमा आनन्दित हुनुहुने, (७८८) भवभीतिविनाशिनी- संसारको भय नाश गर्नुहुने, (७८९) भीमा- भयङ्कर स्वभावकी, (७९०) भीमस्वरूपा- डरलाग्दो रूप भएकी, (७९१) भीमभूतगणावृता- डरलाग्दा भूतप्रेतका गणले घेरिएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१२२॥

(७९२) भूषा- वेषभूषाका रूपमा व्यक्त हुने, (७९३) भूषणरूपा- अलङ्काररूपमा रहेकी, (७९४) भुवनाभयकारिणी- सम्पूर्ण भुवनहरूलाई निर्भय तुल्याउनुहुने, (७९५) भुवना- भुवनेश्वरी नामबाट प्रसिद्ध हुनुभएकी, (७९६) भुवनाराध्या- भुवनहरूका नरनारीहरूद्वारा आराधनीया, (७९७) भाविनी- महत्त्वाकाङ्क्षा गर्नुहुने, (७९८) भुवनेश्वरी- मणिद्वीपकी स्वामिनी अथवा दश महाविद्यामध्ये एक भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१२३॥

(७९९) भेरुण्डा- ठूलो पेट भएकी, (८००) भैरवी- भैरवकी शक्ति, (८०१) भीमा- डरलाग्दी अथवा भीमादेवीका रूपमा विख्यात चण्डी, (८०२) भार्गवी- लक्ष्मी वा पार्वतीका रूपमा रहेकी, (८०३) भार्गवस्थिता- मार्कण्डेय, शौनक, परशुराम आदि ऋषिहरूका घरमा रहेकी, (८०४) भयदा- दुष्टहरूलाई भय प्रदान गर्नुहुने, (८०५) भयहन्त्री- सज्जनहरूको भय नाश गर्नुहुने, (८०६) भवनाथा- संसारकी स्वामिनी, (८०७) भयङ्करी- भयङ्कर स्वरूप भएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१२४॥

भीतिर्भी भयहन्त्री च भूताचारमयास्थिता। भाग्या भगवती भागी भाग्यदा भाग्यमालिनी ॥१२५॥
भगिनी भागिनी भागा भागानन्दा भगोदरी। भगदा भगरूपा च भवदात्री भवार्दिता ॥१२६॥
भूतिर्भूमिर्भ्रमी भ्राभूर्भ्रुकुटीकुटिलेक्षणा। भ्रान्तिहा भ्रान्तिदा भ्रान्तिर्भाविनी भृगुवन्दिता ॥१२७॥
भरणा भवनाधारा भारवी भारधारिणी। भवापहा भवाधारा भवभारविनाशिनी ॥१२८॥
भुजभूर्भुजभाकारा भाविनी भवभाविनी। भगलक्ष्मीर्भगाधारा भगसारा भगाङ्गणा ॥१२९॥
भगमूर्तिर्भगप्रीतिर्भगभागवती भया। भुजङ्गहारकण्ठी च भुजङ्गाङ्गदशोभित ॥१३०॥
भुजङ्गपाशहस्ता च भुजङ्गभोगमण्डिता। भोगदा भागदात्री च भुक्तिमुक्तिप्रदायिनी ॥१३१॥

---

(८०८) भीतिर्भीः- भीति वा भी नामहरूबाट सम्बोधित भई भयका रूपमा रहेकी, (८०९) भयहन्त्री- भयनाशिनी, (८१०) भूताचारमयास्थिता- प्राणीहरूका विभिन्न आचार अँगालेर विभिन्न ठाउँमा रहनुहुने, (८११) भाग्या भगवती- भाग्यका रूपमा रहेकी भगवती, (८१२) भागी- ब्रह्माण्डमा रहेको नारीतत्त्वलाई आफ्नो भाग मान्नुहुने, (८१३) भाग्यदा- भाग्य बनाउनुहुने, (८१४) भाग्यमालिनी- भाग्यको पंक्ति धारण गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१२५॥

(८१५) भागिनी- विश्वप्रपञ्चमा भाग्यका रूपमा रहेकी, (८१६) भागा- प्रत्येक ब्रह्माण्डमा नारीतत्त्वका रूपमा रहेकी, (८१७) भागानन्दा- ऐश्वर्य आदिमा आनन्दित हुनुहुने, (८१८) भगोदरी- आफूभित्र ऐश्वर्य, धर्म, यश, श्री, ज्ञान र वैराग्य धारण गर्नुहुने, (८१९) भगदा- ऐश्वर्य दिनुहुने, (८२०) भगरूपा- धर्मरूपिणी, (८२१) भगदात्री- जन्मदायिनी, (८२२) भवार्दिता- संसारको दुःख देखेर दुःखी हुनुभएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१२६॥

(८२३) भूतिर्भूमिर्भ्रमिः- ऐश्वर्य, भूमि र भ्रान्तिका रूपमा रहेकी, (८२४) भ्रा भूः- दीप्ति र सत्ताका रूपमा रहेकी, (८२५) भ्रुकुटीकुटिलेक्षणा- आँखीभौँ घुमाई कर्के नजरले हेर्नुहुने, (८२६) भ्रान्तिदा, भ्रान्तिहा, भ्रान्तिः- भ्रान्ति दिने, भ्रान्ति हर्ने र आफैँ भ्रान्ति बनेर रहेकी, (८२७) भाविनी, भृगुवन्दिता- भृगुद्वारा कल्याणी देवीका रूपमा वन्दित भाविनी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१२७॥

(८२८) भरणा भवनाधारा- भरणपोषण गर्ने घरकी माताका रूपमा सबैकी आधार, (८२९) भारवी- प्रभा र सूर्यका रूपमा रहेकी, (८३०) भारधारिणी- संसारको भारी बोक्नुहुने, (८३१) भवापहा- भवाधारा- ज्ञानीको लागि संसारतत्त्वको नाश गर्नुहुने र संसारका लागि आधार बन्नुहुने, (८३२) भवभारविनाशिनी- पृथिवीको भार निवारण गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१२८॥

(८३३) भुजभूः भुजभाकारा- भुजाको पुरुषार्थबाट पैदा हुनुहुने र भुजाको वीर्यकान्तिका रूपमा रहेकी, (८३४) भाविनी भवभाविनी- कल्याणी भई संसारको मङ्गल गर्नुहुने, (८३५) भगलक्ष्मीर्भगाचारा- ऐश्वर्यलक्ष्मी र ऐश्वर्यानुकूल आचारणमा रहेकी, (८३६) भगसारा, भगाङ्गणा- ऐश्वर्य, धर्म आदिलाई सारतत्त्व मान्नुहुने र ऐश्वर्यकै आँगनमा नाच्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१२९॥

(८३७) भगमूर्तिः भगप्रीतिः- ऐश्वर्यमूर्ति र ऐश्वर्य आदिका साथ इन्द्रियभोगलाई पनि मन पराउनुहुने, (८३८) भगभागवती भगा- ऐश्वर्य धर्म आदिको सत्ताका कारण भाग्यवती र स्वयं ऐश्वर्यमूर्ति बनेर रहेकी (८३९) भुजङ्गहारकण्ठी- घाँटीमा सर्पको मालालाई हारका रूपमा धारण गर्नुहुने, (८४०) भुजङ्गाङ्गदशोभिता- सर्पलाई बाजूबन्द बनाई धारण गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१३०॥

(८४१) भुजङ्गपाशहस्ता- हातमा सर्पको पाश (बन्धन) धारण गर्नुहुने, (८४२) भुजङ्गभोगमण्डिता- समग्र शरीरमा गुडुल्किएका सर्प धारण गर्नुहुने, (८४३) भोगदा भागदात्री- भोग र भाग्य दुवै दिनुहुने, (८४४) भुक्तिमुक्तिप्रदायिनी- भोग र मोक्ष दुवै दिनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१३१॥

भुजगी भुजगीयुक्ता भगभाग्यपरा भया। भक्तानुकम्पिनी भक्ता भक्तानुरक्तमानसा ॥१३२॥
भक्तिगम्या भक्तिसाध्या भक्तानामार्त्तिनशिनी। महामायामहाविद्या महायोगेश्वरेश्वरी ॥१३३॥
मानदा मानिनी मान्या माननीया महेश्वरी। महेश्वरी महावक्त्रा महापातकनाशिनी ॥१३४॥
महामान्या महामन्त्रा महाकिल्विषनाशिनी। महामान्या महादेवी महामन्त्रस्वरूपिणी ॥१३५॥
महारूपा महाकान्तिर्महालक्ष्मीर्महामतिः। महातुष्टिर्महापुष्टिर्महावृत्तिर्महाधृतिः ॥१३६॥
महाकीर्तिर्महापूर्तिर्महामूर्त्तिर्महामतिः। मया मायावती माता महामायास्वरूपिणी ॥१३७॥
मोहिनी मोदिनी मत्ता मधुपानपरायणा। मातङ्गी मत्तमातङ्गी मातङ्गकुलमण्डिता ॥१३८॥

---

(८४५) भुजगी भुजगीयुक्ता– सर्पिणीहरूद्वारा जेलिएर महासर्पिणीका रूपमा रहेकी, (८४६) भगभाग्यपराभया– ऐश्वर्य र भाग्यका साथ निर्भय भई रहनुहुने, (८४७) भक्तानुकम्पिनी भक्ता– आफ्ना भक्तहरूमाथि करुणा गर्नुहुने र स्वयं भगवान् भुवनेश्वर परब्रह्मको भक्ति गर्नुहुने, (८४८) भक्तानुरक्तमानसा– आफ्नो मनैदेखि भक्तहरूमा अनुरक्त भएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१३२॥

(८४९) भक्तिगम्या भक्तिसाध्या– भक्तिद्वारा प्राप्त हुनुहुने र भक्तिद्वारा नै सिद्ध हुनुहुने, (८५०) भक्तानामार्तिनाशिनी– भक्तहरूका मानसिक वेदना निवारण गर्नुहुने, (८५१) महामाया, महाविद्या महायोगेश्वरेश्वरी– महामाया, महाविद्या र महायोगेश्वरहरूकी पनि ईश्वरी भई विराजमान हुनुभएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१३३॥

(८५२) मानदा, मानिनी, मान्या, माननीया महेश्वरी– मान दिन सिपालु, स्वयं स्वाभिमानिनी पनि बन्नुहुने, सबैद्वारा मान्य र सधैँ माननीया भगवती, (८५३) माहेश्वरी महावक्त्रा– विशाल मुखलाई खुलाएकी भगवान् महाकालकी पराशक्ति महाकाली, (८५४) महापातकनाशिनी– पाँच किसिमका महापातकहरूको नाश गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१३४॥

(८५५) महामान्या महामन्त्रा– विष्णु आदि देवताहरूकी मान्या र तन्त्रशास्त्रमा निर्दिष्ट कोटिकोटि मन्त्रहरूकी स्वामिनी, (८५६) महाकिल्विषनाशिनी– ठूलाठूला पाप नाश गर्नुहुने, (८५७) महामान्या महादेवी– आफ्नै गुणगौरवका कारण कोटि कोटि संख्यामा रहेको ठूलो जनसमूहकी मान्या हुनुभएकी र अद्वितीय दैवीशक्तिका रूपमा रहेकी, (८५८) महामन्त्रस्वरूपिणी– निगम र आगमका मन्त्रसमुदायका रूपमा रहेकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१३५॥

(८५९) महारूपा, महाकान्तिः महालक्ष्मीः, महामतिः– महान् रूप, अपरिमित आभा, अनुपम सम्पदा र अनन्य बुद्धिवैभवकी स्वामिनी, (८६०) महातुष्टिः महापुष्टिः महावृत्तिः महाधृतिः– परम सन्तुष्टि, चरम पुष्टि, अपरिमित जीविका र दीर्घकालव्यापी धीरताका रूपमा प्रकट हुनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१३६॥

(८६१) महाकीर्तिः, महापूर्तिः, महामूर्तिः, महामतिः– महाकीर्ति, महापूर्ति, महामूर्ति र महामतिका रूपमा रहनुभएकी, (८६२) माया, मायावती, माता महामायास्वरूपिणी– सुखस्वरूपिणी, मायासूत्रधारिणी, जगज्जननी र महामायाका रूपमा रहनुभएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१३७॥

(८६३) मोहिनी, मोदिनी, मत्ता, मधुपानपरायणा– मायाको जाल फैलाएर सबैलाई मोहित गर्नुहुसने, सबै लाई विषयजन्य सम्मोदमा भुलाउनुहुने र मधुपानपरायणा युवतीको लीला गर्दै उन्मत्त देखिनुहुने, (८६४) मातङ्गी, मत्तमातङ्गी, मातङ्गकुलमण्डिता– सामान्य हथिनी, मदधारा बगाउने तथा यौवनमत्त हथिनी र वरिपरि हात्तीको झुण्ड लिएर घुमफिर गर्ने हथिनीका रूपमा रहनुभएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१३८॥

मदालसा मदामत्ता मदघूर्णितलोचना। मधुरा मधुराङ्गी च मधुरोष्ठी मधुप्रिया ॥१३९॥
मधुरा मधुरावाचा मधुपानविहारिणी। मन्दोदरी च मन्दा च मन्दैकगतिलालसा ॥१४०॥
मन्दारदामभूषाङ्गी मन्दारवनचारिणी। मदना मदनाधारा मदनालसलोचना ॥१४१॥
मदनी मादिनी माना मदनान्तककामिनी। मञ्जुस्वरा मञ्जुवक्त्रा मञ्जुमञ्जीरधारिणी ॥१४२॥
माधवी माधवाधारा माधवानन्ददायिनी। मानदा मानशीला च मानमान्या मनस्विनी ॥१४३॥
मित्रदा मित्ररूपा च मित्रा मुक्तिस्वरूपिणी। मधुकरी मधुप्रीतिर्मधुमत्यमलस्वना ॥१४४॥
मधुहा मधुहन्त्री च मधुसूदनवन्दिनी। माहेन्द्री मोहनीया च माहेन्द्रवन्दिता मही ॥१४५॥

---

(८६५) मदालसा, महामत्ता, मदघूर्णितलोचना– यौवनमदले अलसाएकी सुन्दरीका रूपमा, मधुपान गरी उन्मत्त युवतीका रूपमा र मदका कारण राता राता आँखा गराई कर्के नजरले हेर्ने तरुणीका रूपमा लीला गर्नुहुने, (८६६) मधुरा मधुराङ्गी मधुरोष्ठी मधुप्रिया– मधुर हावभाव भएकी, मधुर अङ्ग भएकी, मधुर ओँठ भएकी र मधुपान मन पराउनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१३९॥

(८६७) मधुरा, मधुरावाचा, मधुपान विहारिणी– मधुर स्वभाव भएकी, मधुर वाणी उच्चारण गर्ने र मधुपान गरी विहार गर्ने युवतीको लीला गर्नुहुने, (८६८) मन्दोदरी, मन्दा, मन्दैकगतिलालसा– मन्दोदरीनामक मातृकाका रूपमा रहेकी, सुस्त स्वभावकी, ढिलो गरी हिँड्न रुचाउने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१४०॥

(८६९) मन्दारदामभूषाङ्गी, मन्दारवनचारिणी– मन्दारको मालाले अङ्गहरूलाई अलङ्कृत गरी मन्दारको वनमा विचरण गर्नुहुने, (८७०) मदना, मदनाधारा, मदनालसलोचना– मदिरासमान भई लीलाद्वारा जीवहरूलाई मत्त बनाउनुहुने, कामदेवकी आधार, कामुकताका कारण आँखाबाट आलस्य प्रकट गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१४१॥

(८७१) मदिनी, मादिनी, माना, मदनान्तककामिनी– मदले अलङ्कृत भएकी, अरूलाई पनि मदमत्त तुल्याउनुहुने, प्रणयकोप देखाउनुहुने र कामक्रीडाजन्य आनन्द रुचाउनुहुने, (८७२) मञ्जुस्वरा, मञ्जुवक्त्रा मञ्जुमञ्जीरधारिणी– मीठो स्वर भएकी, मनोहर अनुहार भएकी र सुन्दर पाउजेव धारण गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१४२॥

(८७३) माधवी, माधवाधारा, माधवानन्ददायिनी– वासन्तीलता, दुर्गा वा तुलसीका रूपमा रहनुभएकी विष्णुकी जीवनाधार बनेर रहेकी र भगवान् विष्णुलाई आनन्द दिनुहुने, (८७४) मानदा, मानशीला, मानमान्या, मनस्विनी– मान दिनुहुने, मानिनी भएर रहनुहुने, प्रणयकोपको अवस्थामा सम्मानित हुनुहुने र अत्यन्त उदार मन भएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१४३॥

(८७५) मित्रदा, मित्ररूपा, मित्रा मुक्तिस्वरूपिणी– भक्तलाई मित्रता प्रदान गर्नुहुने, मित्रका रूपमा रहनुहुने, स्वयं मित्र वा सूर्यबन्नुहुने र मुक्तिको रूप लिएर भक्तहरूलाई तार्नुहुने, (८७६) मधुकरी, मधुप्रीतिः, मधुमती– भ्रामरी बनेर दैत्यहरूको प्राणान्त गर्नुहुने, मधुरसमा प्रीति गर्नुहुने, ऋतम्भरा प्रज्ञा समन्वित समाधिको अवस्थामा रहनुहुने, अमलस्वना– निर्मल नाद निनादित गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१४४॥

(८७७) मधुहा, मधुहन्त्री, मधुसूदनवन्दिनी– मदिराको उन्माद नाश गर्नुहुने, मधुदानवको संहार गर्नुहुने र मधुसूदनकी गृहिणी बनी उहाँको वन्दना गर्नुहुने, (८७८) माहेन्द्री, मोहनीया महेन्द्रवन्दिता, मही– पूर्वदिशाका रूपमा रहनुहुने, जगत्लाई मोहित गर्ने स्वरूपले सुहाएकी, इन्द्रद्वारा आराधना गरिएकी र विशाल पृथिवीका रूपमा रहनुभएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१४५॥

महिषघ्नी महामान्या महिषासुरमर्दिनी। मर्दिनी मालिनी मान्या मेनका मूर्त्तिरूपिणी ॥१४६॥
मृणाली कोमलाङ्गी च मृणालभुजवल्लरी। मृणालहारमाला च मरालमदगामिनी ॥१४७॥
माहिषी महिषारूढा मृत्युभीतिक्षयङ्करी। याज्ञसेनी यज्ञसेनी यज्ञाङ्गी यज्ञरक्षिका ॥१४८॥
यज्ञमाता यज्ञभोक्त्री यज्ञेशी यज्ञरक्षिका। यामिनी यमुना याभ्या यया याया ययुर्यवा ॥१४९॥
यशस्विनी यशःपूर्णा यशोदा यशसाऽन्विता। यमुना यमदूती च यमरूपा यमोयमा ॥१५०॥
यमोद्धारा यमारातिर्यमामातार्यभाविता। यमीमया च यानाङ्गी यातायातस्वरूपिणी ॥१५१॥
यविनी यवरूपा च यवदा यवधारिणी। यवभोक्त्री यवावाणी यममूर्तिस्वरूपिणी ॥१५२॥

---

(८७९) महिषघ्नी, महामान्या, महिषासुरमर्दिनी– महिषासुरको संहार गर्नुहुने, त्यसै हेतुले सबैकी अत्यन्त सम्मान्या र महिषासुरलाई सेनासहित माड्नुहुने, (८८०) मर्दिनी, मालिनी, मान्या, मेनकामूर्तिरूपिणी– दुष्टहरूको मर्दन गर्नुहुने, वनमाला आदि दिव्यमाला धारण गर्नुहुने, सबैकी मान्या भई रहनुहुने र हिमालयकी पत्नी मेनाको दोस्रो रूपमा रहनुहुने, (८८१) मृणालीकोमलाङ्गी, मृणालभुजवल्लरी, मृणालहारमाला– कमलसमान कोमल अङ्ग भएकी, कमलका डाँठजस्ता भुजारूप लताले सुहाएकी र कमलनालको हार बनाई मालाका रूपमा धारण गर्नुहुने, (८८२) मरालपदगामिनी– हंसको शैलीमा गमन गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१४६–१४७॥

(८८३) महिषी, महिषारूढा, मृत्युभीतिभयङ्करी– परमात्मा सदाशिवकी महारानी, दानवहरूसँग युद्ध गर्दा यमकी शक्ति बनेर राँगोमा सवार हुनुहुने अथवा महिषासुरसँग सङ्ग्राम गर्दा त्यसमाथि सवार भई त्यसलाई दबोच्नुहुने र मृत्युभयलाई नाश गर्नुहुने, (८८४) याज्ञसेनी, यज्ञसेनी, यज्ञाङ्गी, यज्ञरक्षिका, यज्ञमाता, यज्ञभोक्त्री, यज्ञेशी, यज्ञरक्षिका– यज्ञसेन राजाकी छोरी द्रौपदीका रूपमा पैदा हुनुभएकी, यज्ञसेन अर्थात् भगवान् विष्णुकी प्रिया लक्ष्मीका रूपमा रहनुभएकी, यज्ञाङ्गी अर्थात् सोमलताका रूपमा हुनुहुने, यज्ञको रक्षा गर्नुहुने, यज्ञकी जननी, यज्ञको फल भोग गर्नुहुने, यज्ञेशी अर्थात् यज्ञकी स्वामिनी, यज्ञरक्षिका अग्नि र सोमद्वारा नित्य सञ्चालित जगत् यज्ञको रक्षा गर्नुहुने, (८८५) यामिनी, यमुना, याभ्या, यया, याया, ययुर्यवा– यामिनी– रातका रूपमा, यमुना– यमुना नदीका रूपमा, याभ्या– शिवसँग मैथुन गर्नुहुने प्रेयसीका रूपमा, यया– ययातिका रूपमा रहेकी, याया– यायावरका रूपमा रहेकी, ययुः– घोडाका रूपमा र यवा– हातको बूढीऔंलामा रहने शुभसूचक रेखाका रूपमा रहेकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१४८–१४९॥

(८८६) यशस्विनी, यशःपूर्णा, यशोदा, यशसाऽन्विता– उज्यालो यश भएकी, यशले ढाकिएकी, उत्तम कर्म गर्नेलाई यश दिनुहुने अथवा कृष्णकी धाइआमाका रूपमा रहेकी र विश्वव्यापी यशले सुहाएकी, (८८७) यमुना, यमदूती, यमरूपा, यमोपमा– यमकी बहिनीका रूपमा रहनुभएकी, यमकी दूतीका रूपमा रहनुभएकी, यमरूपा अर्थात् यमकी बहिनी हुनाले यमसमान शारीरिक संरचनामा देखिनुहुने अर्थात् यमसमान स्वरूपमा देखिनुहुने, (८८८) यमोद्धारा, यमारातिः, यमा, माता आर्यभाविता– उत्तम कर्म गर्नेहरूलाई यमदण्डदेखि जोगाउनुहुने, यमराजका शत्रुहरूमाथि नियन्त्रण कायम गर्नुहुने सम्पूर्ण जगत्की जननी र शुद्ध हृदयका मानिसद्वारा सेवा गरिएकी, (८८९) यमनीया, यानाङ्गी, यातायातस्वरूपिणी– उपरतिका लागि आराधना गर्न लायक भएकी, यानाङ्गी अर्थात् यान एवं वाहनको अङ्गका रूपमा रहेकी यातायातका रूपमा रहेकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१५०–१५१॥

(८९०) यविनी, यवरूपा, यवदा यवधारिणी, यवभोक्त्री, यवावाणी, यवमूर्तिस्वरूपिणी– जौलाई सर्वाङ्गमा धारण गर्ने देवी, जौकै रूपमा रहने देवी, जौ दान गर्ने देवी, कर्म र धर्मका लागि जौको सङ्ग्रह गर्ने देवी, जौबाट बनेको प्रसाद भोजन गर्ने देवी, जौझैँ सूक्ष्म तर सारगर्भित वाणी भएकी, जौको आकारको मूर्तिमा विराजमान हुनुहुने देवी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१५२॥

योगाद्या योगसंयुक्ता योगदा योगशालिनी। योनिरूपा योनियुक्ता योजनीया च योजनी ॥१५३॥
रतिरूपा रतिरामा रजनी राजनी रमा। रमणी रामणी रामा रतिरूपा रतिप्रिया ॥१५४॥
रक्ता नीरक्तचरणा रक्तानुरक्तमानसा। रसा रसवती रासा रसभोक्त्री रसस्वना ॥१५५॥
रसाङ्गी रसविस्तीर्णा रसना रसनावती। रूपिणी रूपसंयुक्ता रूपी रूपमती रतिः ॥१५६॥
रञ्जिनी रागिणी राज्ञी राजराजनिषेविता। रारञ्जी राजती राजी राजीवचारुलोचना ॥१५७॥

---

(८९१) योगाद्या, योगसंयुक्ता, योगदा योगशालिनी– जीव र शिवको संयोग गराउने आद्ययोगका रूपमा रहेकी, परमात्मासँग योगद्वारा जोडिएकी, भक्तहरूलाई योगको उपदेश गर्नुहुने, योगशालिनी अर्थात् योगविद्याले सुहाएकी, (८९२) योनिरूपा योनियुक्ता, योजनीया योजनी– शिवलिङ्गको फेदमा योनिरूपमा रहेकी नारीका रूपमा रहँदा योनिले युक्त भएकी, योजनीया अर्थात् मैथुनी सृष्टिको शुभारम्भमा लिङ्ग र योनिको सम्पर्कबाट सन्तानोत्पत्तिको व्यवस्था भएपछि लिङ्गलाई योनिमा संयोजन गराउन योग्य नारीपात्रका रूपमा रहेकी, योजनी– योनिमा लिङ्गको संयोजन गराउनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१५३॥

(८९३) रतिरूपा, रतिरामा, रजनी राजनी, रमा– नारी एवं पुरुषका हृदयमा प्रीतितत्त्वका रूपमा रहेकी, प्रेममयी हुँदा अत्यन्त राम्री देखिनुहुने अथवा रतिक्रीडा गर्दा अत्यन्त आकर्षक चेष्टा गर्नुहुने, रात्रिका रूपमा रहनुहुने, राजाहरूलाई राजधर्ममा दीक्षित गरी लोककल्याण गर्नुहुने, लक्ष्मीका रूपमा रहनुभएकी, (८९४) रमणी, रामणी, रामा रतिरूपा रतिप्रिया– अत्यन्त सुन्दरी र रमण गर्न योग्य युवतीका रूपमा देखिनुहुने, रमणीया अर्थात् परमात्मालाई आफैं माध्यम बनेर रमण गराउनुहुने, अत्यन्त सुन्दरी महिलाका रूपमा रहेकी, कामदेवकी पत्नी रतिसमान रूप भएकी, रतिक्रीडा रुचाउनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१५४॥

(८९५) रक्ता, नीरक्तचरणा, रक्तानुरक्तमानसा– रातो वर्णले सुहाएकी, युद्धको मैदानमा परिश्रमका कारण खुट्टाको लालिमा हराएकी, नर नारीप्रति प्रीतिपूर्ण र सदाशिवप्रति अनुरक्त चित्तवृत्ति भएकी, (८९६) रसा, रसवती, रासा, रसभोक्त्री रसस्वना– पृथिवीका रूपमा रहनुभएकी, ब्रह्मरसले युक्त भएकी राधा र गोपिनी बनेर श्रीकृष्णका साथ रासलीला गर्नुहुने, ब्रह्मानन्दको रसभोग गर्नुहुने, रसमा निमग्न हुँदा आनन्दको ध्वनि गुनगुनाउनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१५५॥

(८९७) रसाङ्गी, रसविस्तीर्णा, रसना, रसनावती– सर्वाङ्गमा ब्रह्मानन्दको अनुभव गर्ने आनन्दरसका रूपमा विश्वप्रपञ्चमा फैलिएकी रसना– जिब्रोका रूपमा रही रसास्वाद गर्नुहुने, रसनावती– करधनी धारण गर्ने सुन्दरीका रूपमा रहेकी, (८९८) रूपिणी, रूपसंयुक्ता, रूपी, रूपवती, रतिः– अत्यन्त रूपवती बनेर रहेकी, सुन्दर रूप भएकी, आफ्नो रूपको प्रतिबिम्बद्वारा सबैलाई सुन्दर रूप सम्पन्न तुल्याउने अलौकिक रूपसम्पन्न पार्वतीका रूपमा रहेकी, रतिझैं सुन्दरी लक्ष्मीका रूपमा रहेकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१५६॥

(८९९) रञ्जिनी, रागिणी, राज्ञी, राजराजनिषेविता– संसारको मनोरञ्जन गराउने, सङ्गीतमा प्रसिद्ध रागिणीका रूपमा रहेकी, सम्पूर्ण विश्वप्रपञ्चका स्वामी भुवनेश्वर भगवान्‌की महारानी भुवनेश्वरीका रूपमा रहेकी, कुबेरकी शक्ति कौबेरी बनेर रहनुभएकी, (९००) रारञ्ची, राजती, राजी, राजीवचारुलोचना– निर्गुण परमात्मालाई लोककल्याण गर्ने हेतुले बारम्बार अवतारी बनाई मनोरञ्जन गराउनुहुने, संसारमा सर्वोपरि महाशक्तिका रूपमा विराजमान हुनुहुने, जनपङ्क्तिका रूपमा रहनुभएकी, र कमलझैं सुन्दर नयनयुगलले सुहाएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१५७॥

राजीवचारुवदना राजसी राजसोत्तमा। रजस्था रजसाधारा रजोमूर्ती रजोन्विता ॥१५८॥
रम्या रमणसम्पन्ना रघुनाथप्रियङ्करी। रामाराध्या रमामूर्ती रमणीया रमोत्तमा ॥१५९॥
रक्ताम्बरा च रक्ताक्षी रक्तपद्मविलोचना। रक्तपद्मस्थिता रक्ता रक्तपद्मनिवासिनी ॥१६०॥
रक्तपद्मधरा रक्तपद्मासननिवासिनी। रेवती रोहिणी रौद्री रुद्राणी रुद्रकामिनी ॥१६१॥
रुद्राक्षमालिनी रुद्रा रुद्रमूर्त्तिस्वरूपिणी। राध्या राध्यतमा राध्यराधिका रामवत्सला ॥१६२॥
रुचिरा रुचिराङ्गी च रुचा रुचिकरी रुचिः। रुरुनेत्रा रुचिराक्षी भैरवी चर्मवासिनी ॥१६३॥

---

(९०१) राजीवचारुवदना, राजसी, राजसोत्तमा- कमलभैँ रमणीय मुख भएकी, रजोगुणकी अधिष्ठात्री, राजसोत्तमा- सर्वोत्तम मानिएकी ब्रह्माणीका रूपमा रहनुहुने, (९०२) रजस्था, राजसाचारा रजोमूर्तिः, रजोऽन्विता- रजोगुणमा रही आफूलाई ब्रह्मा एवं ब्रह्माणीका रूपमा परिणत गर्नुहुने, रजोगुणी राजपरिवार आदिमा पैदा भई रजोगुणी आचार देखाउनुहुने, ररजोगुणकी मूर्तिका रूपमा पैदा हुनुहुने, रजोगुणले युक्त भएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१५८॥

(९०३) रम्या, रमणसम्पन्ना, रघुनाथप्रियङ्करी- रमणीय सौन्दर्य भएकी, रमणसम्पन्ना, श्रीरामको वनवासकालमा सीताका रूपमा अनुगमन गर्नुहुने, वनवासकालमा रघुनाथ श्रीरामलाई प्यारो लाग्ने कर्म गर्नुहुने, (९०४) रामाराध्या, रमामूर्तिः, रमणीया रमोत्तमा- श्रीरामकी आराधनीया जीवनसंगिनी सीताजी, श्रीलक्ष्मीकी अवतार, सुरम्य रूप भएकी र रमणीहरूमा सर्वोत्तम भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१५९॥

(९०५) रक्ताम्बरा, रक्ताक्षी, रक्तपद्मविलोचना- राता वस्त्र धारण गर्नुहुने, राता नयनले सुहाएकी, रातो कमलभैँ रमणीय नयन युगल भएकी, (९०६) रक्तपद्मस्थिता, रक्ता, रक्तपद्मनिवासिनी, रक्तपद्मस्थिता- रातो कमलमा बसेकी कमलासना, सम्पूर्ण शृङ्गार र शरीरमा रातो वर्ण भएकी एवं रातो कमलमा टेकेर उभिएकी गुह्येश्वर ीका चरणकमलमा म प्रणाम गर्दछु ॥१६०॥

(९०७) रक्तपद्मधरा, रक्तपद्मासननिवासिनी- रातो कमल धारण गर्नुहुने, रातो कमललाई आसन बनाई त्यही निवास गर्नुहुने, (९०८) रेवती, रोहिणी, रौद्री रुद्राणी रुद्रकामिनी- रेवतीनक्षत्र वा वलरामकी पत्नीका रूपमा रहेकी, नक्षत्र वा बलरामकी आमाका रूपमा रहेकी, भयङ्कर रूपधारिणी महाकालीका रूपमा रहेकी, भगवती पार्वतीका रूपमा रहेकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१६१॥

(९०९) (क) रुद्राक्षमालिनी, रुद्रा, रुद्रमूर्तिस्वरूपिणी- रुद्राक्षको माला धारण गर्नुहुने, रुद्रशक्तिका रूपमा रहेकी, रुद्रकै मूर्ति धारण गर्नुहुने, (९१०) राध्या, राध्यतमा, राध्यराधिका, रामवत्सला- सबैकी आराध्या, अत्यन्त आराधनीया, श्रीकृष्णकी आराध्या राधिकाका रूपमा लीला गर्नुहुने, श्रीरामकी प्यारी सीता र बलरामकी प्यारी रेवतीका रूपमा लीला गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१६२॥

(९११) रुचिरा, रुचिराङ्गी, रुचा, रुचिकरी, रुचिः- सुन्दर र सुरुचिपूर्ण सुन्दरीका रूपमा लीला गर्नुहुने, रुचिर अङ्गप्रत्यङ्ग भएकी, आफ्नो कान्तिद्वारा अरूको रुचि बढाउनुहुने, रुचिका रूपमा प्रत्येक हृदयमा रहनुहुने, (९१२) रुरुनेत्रा, रुचिराक्षी भैरवी, चर्मवासिनी- रुरुमृगका नयनभैँ चपल नयनयुगलले सुहाएकी, आकर्षक आँखा भएकी, भैरवकी शक्ति, छालाको सौन्दर्य बनेर सबैलाई मोहित गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१६३॥

रौरवान्तकरी ह्रेषा रक्षा रक्षःस्वरूपिणी। लम्बोदरी च लम्बोष्ठी लम्बवक्त्रा च लम्बिनी ॥१६४॥
लम्बस्तनी लम्बहस्ता लम्बोदरनिषेविता। लक्ष्मीर्लक्ष्मीस्वरूपा च लक्ष्मीनाथप्रियङ्करी ॥१६५॥
लक्षणा लक्षणालक्ष्या लाक्षालोहितलोचना। लता च लतिका बाला लवङ्गी लोहितेक्षणा ॥१६६॥
लीला लीलावती लीला लालना लसनावती। लाङ्गली लाङ्गलाधारा लाङ्गरीपरिवन्दिता ॥१६७॥
लिपिर्लिपिमयी लेखा लिपिमूर्तिस्वरूपिणी। ललना ललनीलोला लङ्केश्वरनिषेविता ॥१६८॥
ललिता ललिताङ्गी च ललितालकशालिनी। ललिता ललिताक्षी च ललनागणसेविता ॥१६९॥

---

(९१३) (क) रौरवान्तकरी- रौरव नरकको कष्ट नाश गर्नुहुने, (ख) ह्रेषा- बाघको गर्जन वा घोडाको हिनहिनाहटका रूपमा रहनुहुने, (ग) रक्षा- जगत्को रक्षाका लागि आफैं रक्षा बनेर रहनुहुने, (घ) राकास्वरूपिणी- पूर्णिमा तिथिका रूपमा रहनुहुने, (९१४) (क) लम्बोदरी- ठूलो पेट भएकी, (ख) लम्बोष्ठी- ठूला ओठ भएकी, (ग) लम्बवक्त्रा- ठूलो मुख भएकी, (घ) लम्बिनी-अग्लो शरीर भएकी अथवा दुर्गा एवं लक्ष्मीका रूपमा रहेकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१६४॥

(९१५) (क) लम्बस्तनी- ठूला स्तन भएकी, (ख) लम्बहस्ता- लामा हात भएकी, (ग) लम्बोदरनिषेविता- लम्बोदर गणेशद्वारा माताका रूपमा सेवा गरिएकी, (९१६) (क) लक्ष्मीः- शोभा सम्पत्तिका रूपमा रहेकी, (ख) लक्ष्मीस्वरूपा- भगवती विष्णुपत्नी लक्ष्मीका रूपमा रहेकी, (ग) लक्ष्मीनाथप्रियङ्करी- लक्ष्मीनाथ भगवान् नारायणका प्रिय कार्य गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१६५॥

(९१७) (क) लक्षणा लक्षणालक्ष्या- लक्षणाशक्तिका रूपमा रहेकी, कुनै पारिभाषिक वाक्य र सामान्य वाक्यद्वारा पनि जसको स्वरूपलाई लक्षित गर्न सकिँदैन त्यस्ती अलक्ष्या, (ख) लाक्षा, लोहितलोचना- लाहासमान राता नयनले सुहाएकी, (९१८) (क) लता- लहरो (बल्लरी) वा राम्री नारीका रूपमा रहेकी, (ख) बाला लतिका- सानो जातको बाललहरोका रूपमा रहेकी, (ग) लवङ्गी- ल्वाङ्को लताझैं देखिने, लोहितेक्षणा- रक्तिमापूर्ण सुन्दर नयन भएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१६६॥

(९१९) (क) लीला- मानिसको रूप लिएर गरिने चरित्रका रूपमा रहेकी, (ख) लीलावती- अत्यन्त राम्री नारीका रूपमा रहनुहुने, (ग) लीला- आफ्ना प्रियतम भगवान् लीलानायक शिवका क्रिया-प्रतिक्रियाहरूको अुसरण गर्नुहुने अथवा शृङ्गारका चेष्टाहरूमा ती लीलालाई प्रतिबिम्बित गर्नुहुने, (घ) लालना- संसारका प्राणीहरूलाई ममतामयी आमा बनेर प्रेमले सुम्सुम्याउनुहुने, (ङ) लसनावती- विलासिनी बनी विलास गर्नुहुने, (९२०) (क) लाङ्गली- शिवरूप पुरुषको लिङ्ग धारण गर्नुहुने, (ख) लाङ्गलाधारा- अर्धचन्द्रको श्रृङ्गाकार स्वरूप धारण गर्नुहुने, (ग) लाङ्गलिपरिवन्दिता- बलरामजीद्वारा वन्दना गरिएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१६७॥

(९२१) (क) लिपिः- अक्षर वा वर्णहरूलाई बुझाउन प्रयोग गरिने चिह्न वा अक्षरलिपिका रूपमा रहेकी, (ख) लिपिमयी लेखा- लिपिमा लेखिएको रचनाका रूपमा रहेकी, (ग) लिपिमूर्तिस्वरूपिणी- लिपिफलकमा वर्णमात्राको रूप लिएर वाणीका रूपमा प्रकट हुनुहुने, (९२२) (क) ललना- सुन्दरी नारीका रूपमा प्रकट हुनुहुने, (ख) ललनी- ललनी अर्थात् संसारमा क्रीडा गर्नुहुने, (ग) लोला- चञ्चल स्वभावकी सुन्दरीका रूपमा देखिनुहुने, (घ) लङ्केश्वरनिषेविता- लङ्केश्वर विभीषणद्वारा पूजा गरिएकी, (९२३) (क) ललिता- भुवनेश्वरी वा महात्रिपुरसुन्दरी विद्याका रूपमा रहेकी, (ख) ललिताङ्गी- सुन्दर अङ्गप्रत्यङ्गका कारण अत्यन्त सुहाएकी, (ग) ललितालकशालिनी- सुन्दर केशरचना भएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१६८-१६९॥

लालसा लालिनी लास्या लयलास्यपरायणा। शान्तिः शान्तिकरी शान्ता शीता शीर्षशशी शिवा ॥१७०॥
शीतार्त्तशीतलरूपा शीतलाङ्गी शुभाशुभा। शाङ्करी शङ्करप्रीता शिवा शिवनितम्बिनी ॥१७१॥
शिवदा शिवरूपा च शिवोपरिनिषेदुषी। शाम्भवी शम्भुरूपा च शाश्वती च सरस्वती ॥१७२॥
शान्ता शान्तादरी शान्ता शान्तिः शान्तिप्रदायिनी। शारदा शरदा ज्योत्स्ना शारदीया शतानना ॥१७३॥
सीमन्ता सविनीशा च सामगानप्रकाशिनी। सामस्वती शतानन्दा शतानन्दातिनन्दिता ॥१७४॥

---

(९२४) (क) ललिता- राधाकी सहचरी, (ख) ललिताक्षी- सुन्दरनयनी, (ग) ललनागणसेविता- सुन्दरीको समूहद्वारा सेवित भएकी भगवती, (९२५) (क) लालसा- उत्सुकता वा तीव्र इच्छाको भावमा प्रकट हुनुहुने, (ख) लालिनी- स्वतन्त्ररूपमा विचरण गर्नुहुने, (ग) लास्या- सुन्दर नृत्य प्रस्तुत गर्नुहुने, (घ) लयलास्यपरायणा- लयपूर्वक नृत्य प्रस्तुत गर्न कुशल भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१७०॥

(९२६) (क) शान्तिः- शमरूपमा रहनुहुने भगवती दुर्गा, (ख) शान्तिकरी- संसारमा शान्ति फैलाउनुहुने, (ग) शान्ता- शान्त स्वभावमा रहनुहुने, (घ) शीता- दूबो वा अमलाका रूपमा प्रकट हुनुहुने, (ङ) शीर्षशशी शिवा- शिरमा चन्द्रमा धारण गर्ने भगवती शिवाका रूपमा रहनुभएकी, (९२७) (क) शीतार्तशीतलरूपा- शीत (जाडो) को तापले सन्तप्त भएका प्राणीहरूलाई आत्माको शान्ति प्रदान गर्नुहुने, (ख) शीतलाङ्गी- अङ्गप्रत्यङ्गमा शीतल शान्तिको आभा धारण गर्नुहुने, (ग) शुभाशुभा- शुभ एवं अशुभ दुबै रूपमा रहेकी, (९२८) (क) शाङ्करी- भगवान् शङ्करकी शक्ति, (ख) शङ्करप्रीता- भगवान् शङ्करको स्नेह प्राप्त गर्नुहुने, (ग) शिवा- कल्याणमयी, (घ) शिवनितम्बिनी- भगवान् शिवकी गृहिणी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१७१॥

(९२९) (क) शिवदा- कल्याण दिनुहुने, (ख) शिवरूपा- कल्याणमयी, (ग) शिवोपरिनिषेदुषी- सामरस्यलीलामा शिवमाथि बस्नुहुने वा शयन गर्नुहुने, (९३०) (क) शाम्भवी- भगवान् शम्भुकी महाशक्ति वा महाविद्या, (ख) शम्भुरूपा- भगवान् शम्भुकै रूपमा रहनुहुने, (ग) शाश्वती- सनातनरूपमा रहनुहुने, (घ) सरस्वती- ज्ञानमूर्ति सरस्वती वाग्देवी वा सरस्वती नदीका रूपमा रहनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१७२॥

(९३१) (क) शान्ता- दशरथकी छोरी र श्रीरामकी दिदीका रूपमा पैदा हुनुभएकी, (ख) शान्तादरी- काम, क्रोध आदि नभएका आनन्दमय पुरुषहरूलाई आदर गर्नुहुने, (ग) शान्ता- शमीवृक्षका रूपमा रहनुहुने, (घ) शान्तिः- अरिष्ट सूचक ग्रह, उत्पात र शकुन देखिएमा शुभप्राप्तिका लागि गरिने पुण्यकर्मका रूपमा रहनुभएकी, (ङ) शान्तिप्रदायिनी- आराधना गर्ने भक्तहरूलाई आत्मानन्द प्रदान गर्नुहुने, (९३२) (क) शारदा- सरस्वतीका रूपमा रहनुहुने, (ख) शारदी- शरद्कालको चन्द्रमाको चाँदनीका रूपमा रहनुहुने, (ग) ज्योत्स्ना- सरस्वतीका साधकहरूका रूपमा रहनुहुने, (घ) शारदीया शतानना- हजारौं मुख र आँखाका साथ प्रकट भई मुनिहरूमाथि कृपा गर्नुहुने दुर्गा भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१७३॥

(९३३) (क) सीमन्ता- सुन्दर सीमन्त (केशवेश) धारण गर्नुहुने, (ख) सामिधेनीशा- होमको अग्नि बाल्दा पाठ वा प्रयोग गरिने ऋग्वेदको सामिधेनी ऋचाकी स्वामिनी, (ग) सामगानप्रकाशिनी- सामवेदका गेय मन्त्रको गान गराउनुहुने, (९३४) (क) सामस्वरा- सामवेदको स्वरका रूपमा रहनुहुने, (ख) शतानन्दा- ब्रह्मा, विष्णु, कृष्ण, गौतम मुनि अथवा राजा जनकका पुरोहितसँग सम्बन्ध राख्नुहुने, (ग) शतानन्दातिनन्दिता- शतानन्दहरूको सम्बन्धका कारण अत्यन्त आनन्दित भएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१७४॥

सीता सुवदना साध्वी शीतपानपरायणा। शर्वरी शर्वरीरूपा शिवाराधविनोदिनी ॥१७५॥
सीमन्तिनी च सीमन्तवीर्या सीमन्तसेविता। शैशवी शिवरूपा च शिशुभिः परिवेष्टिता ॥१७६॥
षण्मुखी षण्मुखीमाता षडाननिषेविता। षडङ्गयोगगम्या च षर्वा षर्वस्वरूपिणी ॥१७७॥
सुन्दरा सुन्दरी शुक्रा सुन्दरीगणसेविता। सुधाधारा सुधावाणी सुधामधुररूपिणी ॥१७८॥
सुरेश्वरी सुरानन्दा सुरासुरनिषेविता। सुरारिदलिनी सारा सौन्दर्यशालिनी सती ॥१७९॥
शुम्भहा शुम्भदलिनी सर्वमङ्गलमङ्गला। सर्वाणी सर्वदात्री च सर्वा सर्वस्वदायिनी ॥१८०॥
सर्वेशी सर्वजननी सर्वान्दस्वरूपिणी। सर्वसौन्दर्ययुक्ता च सर्वसौन्दर्यदायिनी ॥१८१॥

---

(९३५) (क) सीता- जनककी सुपुत्री, (ख) सुवदना- अत्यन्त सुन्दरी नारीका रूपमा रहनुहुने, (ग) साध्वी- साध्वी अर्थात् परमपतिव्रता नारीका रूपमा रहेकी, (घ) शीतपानपरायणा- हिमालयको हिमपान गरी भगवान् शिवको आराधना गर्नुहुने अथवा शीतल पेय पिउनुहुने, (९३६) (क) शर्वरी- रातका रूपमा प्रकट हुनुहुने, (ख) शर्वरीरूपा- महाकालीका रूपमा रहनुहुने, (ग) शिवाराधविनोदिनी- शिवजीको आराधना गरी मनोविनोद गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१७५॥

(९३७) (क) सीमन्तिनी- सिउँदोले सुहाएकी, (ख) सीमन्तवीर्या- सिउँदोमा अपरिमित शक्ति धारण गर्नुहुने, (ग) सीमन्तसेविता- सुन्दर केशवेशले सुहाएकी, (९३८) (क) शैशवी- सुन्दर शैशव भएकी, (ख) शिवरूपा- कल्याणरूपिणी, (ग) शिशुभिः परिवारिता- सुन्दर शिशुहरूले घेरिएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१७६॥

(९३९) (क) षण्मुखी- पाँच ज्ञानेन्द्रिय र मनले सुहाएकी, (ख) षण्मुखमाता- स्वामी कार्तिकेयकी आमा, (ग) षडाननिषेविता- स्वामी कार्तिकेयद्वारा सेवा गरिएकी, (९४०) (क) षडङ्गयोगगम्या- आसन, प्राणायाम, प्रत्याहार धारण ध्यान र समाधिद्वारा प्राप्त गरिनुहुने, (ख) षर्वा- वामनहरूकी स्वामिनी, (ग) षर्वस्वरूपिणी- खर्वनिधिकै रूपमा रहनुभएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१७७॥

(९४१) (क) सुन्दरा- कामदेवकी पत्नी रतिका रूपमा रहेकी, (ख) सुन्दरी- त्रिपुरसुन्दरीका रूपमा रहेकी, (ग) सुन्दरीगणसेविता- सम्मोहक सौन्दर्य भएका सेविकाहरूद्वारा सेवा गरिएकी, (९४२) (क) सुधाधारा- चन्द्रमाका रूपमा रहने, (ख) सुधावाणी- अमृतवाणी भएकी देवताका रूपमा रहने, (ग) सुधामधुररूपिणी- अमृतझैँ मधुर स्वरूप भएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१७८॥

(९४३) (क) सुरेश्वरी- देवताहरूकी स्वामिनी, (ख) सुरानन्दा- देवताहरूलाई आनन्द दिने, (ग) सुरासुरनिषेविता- देवता र असुरद्वारा सेवा गरिएकी, (९४४) (क) सुरारिदलिनी- देवताका शत्रुहरूको संहार गर्नुहुने, (ख) सारा- अमृतमयी, (ग) सौन्दर्यशालिनी- सौन्दर्यले सुहाएकी, (घ) सती- सत्यस्वरूपिणी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१७९॥

(९४५) (क) शुम्भहा- शुम्भ दानवको संहार गर्नुहुने, (ख) शुम्भदलिनी- शुम्भलाई युद्धमा टुक्रा टुक्रा बनाउनुहुने, (ग) सर्वमङ्गलमङ्गला- सम्पूर्ण मङ्गललाई पनि मङ्गलमय तुल्याउनुहुने, (९४६) (क) शर्वाणी- भगवान् शिवकी अर्धाङ्गिनी, (ख) सर्वदात्री- भुक्ति, मुक्ति प्रदान गर्नुहुने, (ग) सर्वा- सम्पूर्ण चराचरमा व्याप्त हुनुहुने, (घ) शर्वा- शिवप्रिया, (ङ) सर्वस्वदायिनी- सर्वस्व प्रदान गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१८०॥

(९४७) (क) सर्वेशी- सकल संसारकी स्वामिनी, (ख) सर्वजननी- सकल जगत्की आमा, (ग) सर्वानन्दस्वरूपिणी- सबैका हृदयमा आनन्दको रूप लिएर रहनुभएकी, (९४८) (क) सर्वसौन्दर्ययुक्ता- समग्र सौन्दर्यले सुहाएकी, (ख) सर्वसौन्दर्यदायिनी- सबैलाई सुन्दरता दिनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१८१॥

सर्वदुःस्वप्नशमनी सर्वमृत्युप्रणाशिनी। सर्वविघ्नविनाशा च सर्वमङ्गलदायिनी ॥१८२॥
सर्वकामप्रदा सर्वासर्वानन्दप्रदायिनी। सर्वैश्वर्यस्वरूपा च सर्वैश्वर्यप्रदायिनी ॥१८३॥
सर्वपापप्रशमनी सर्वपातकनाशिनी। सर्वज्ञानस्वरूपा च सर्वज्ञा सर्वदर्शना ॥१८४॥
सर्वार्थसाधिनी सिद्धा सिद्धचारणसेविता। सर्वदेवस्वरूपा च सर्वदेवमयी शुभा ॥१८५॥
सर्वाङ्गसुन्दरी सुश्रीः सर्वभौभाग्यदायिनी। सर्वकामप्रवीणा च सर्वकामप्रसाधिनी ॥१८६॥
सर्वकल्याणयुक्ता च सर्वाभरणभूषिता। सर्वशृङ्गारवेशाढ्या सर्वसम्पत्तिदायिनी ॥१८७॥
समारूपा शमीमूर्तिः शमीशमप्रवर्त्तिनी। सागरा सागरासाध्या सागरालवन्दिता ॥१८८॥

---

(९४९) (क) सर्वदुःस्वप्नशमनी– सम्पूर्ण नराम्रा सपनाका दोष मेटाउनुहुने, (ख) सर्वमृत्युप्रणाशिनी– आफ्ना भक्तहरूको अपमृत्यु, अकालमृत्यु र दुर्मृत्यु हरण गर्नुहुने, (९५०) (क) सर्वविघ्नविनाशा– सबै किसिमका विघ्न नाश गर्नुहुने, (ख) सर्वमङ्गलदायिनी– सबै किसिमका मङ्गल दिनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१८२॥

(९५१) (क) सर्वकामप्रदा– सम्पूर्ण कामना साकार तुल्याउनुहुने, (ख) सर्वा– सर्वत्र व्याप्त, (ग) सर्वानन्दप्रदायिनी– सबैलाई आनन्द प्रदान गर्नुहुने, (९५२) सर्वैश्वर्यस्वरूपा– सम्पूर्ण ऐश्वर्यको स्वरूपमा रहेकी, (ख) सर्वैश्वर्यप्रदायिनी– आफ्ना भक्तलाई सम्पूर्ण ऐश्वर्य दिनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१८३॥

(९५३) (क) सर्वपापप्रशमनी– सबै किसिमका महापाप नाश गर्नुहुने, (ख) सर्वपातकनाशिनी– सबै किसिमका पातक–उपपातक नाश गर्नुहुने, (९५४) (क) सर्वज्ञानस्वरूपा– सबै किसिमका ज्ञानका रूपमा रहेकी, (ख) सर्वज्ञा– अन्तर्यामी भई सबैका मनका कुरा जान्नुहुने, (ग) सर्वदर्शना– सहस्राक्षी भई सबै चराचरका घरना एकै चोटि देख्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१८४॥

(९५५) (क) सर्वार्थसाधिनी– सम्पूर्ण पुरुषार्थकी साधिका, (ख) सिद्धा– सम्पूर्ण सिद्धिहरूलाई सिद्ध गर्नुभएकी, (ग) सिद्धचारणसेविता– सिद्ध एवं चारणहरूद्वारा सेवा गरिएकी, (९५६) (क) सर्वदेवस्वरूपा– सम्पूर्ण देवताहरूका रूपमा रहेकी, (ख) सर्वदेवमयी– सम्पूर्ण देवताहरूको शक्ति लिएर अवतीर्ण भएकी, (ग) शुभा– मङ्गलमयी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१८५॥

(९५७) (क) सर्वाङ्गसुन्दरी– सबै अङ्गमा सौन्दर्यको आभा भरेकी, (ख) सुश्रीः– सुन्दर स्वरूपकी लक्ष्मीका रूपमा रहेकी, (ग) सर्वसौभाग्यदायिनी– सबै सौभाग्य दिनुहुने, (९५८) (क) सर्वकर्मप्रवीणा– सबै कर्म गर्न कुशल, (ख) सर्वकामप्रसाधिनी– सम्पूर्ण कामना पूर्ण तुल्याउनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु॥१८६॥

(९५९) (क) सर्वकल्याणयुक्ता– सबै किसिमका कल्याणले सम्पन्न, (ख) सर्वाभरणभूषिता– सबै किसिमका अलङ्कारद्वारा अलङ्कृत, (९६०) (क) सर्वशृङ्गारवेशाढ्या– सम्पूर्ण शृङ्गारका वेषभूषाले सम्पन्न भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१८७॥

(९६१) (क) समारूपा– एक संवत्सरात्मक कालका रूपमा रहेकी, (ख) शमीमूर्तिः– शमीवृक्षका रूपमा रहेकी, (ग) शमी– शान्तिरूपा, (घ) शमप्रवर्तिनी– शान्तिको प्रवर्तन गर्नुहुने, (९६२) (क) सागरा– समुद्रका रूपमा रहेकी, (ख) सगराराध्या– राजा सगरद्वारा आराधना गरिएकी, (ग) सागरालयवन्दिता– वरुणद्वारा वन्दना गरिएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१८८॥

स्वरूपा सुस्वरूपा च सुकान्तिकुचमण्डला। सुमतिः सुमतिप्रख्या सुमतेर्दायिनी सुधा ॥१८९॥
सकला सकलाधारा सकलानन्ददायिनी। सुचिन्ता सुचरित्रा च सुपुण्याजनवन्दिता ॥१९०॥
सावित्री च सवित्री च सवितृमूर्त्तिपूजिता। सुमना सुमनाराध्या सुमनोगणवन्दिता ॥१९१॥
शामनी शमनी शामा सामान्यजनभाविता। स्वर्णप्रभा स्वर्णवर्णा स्वर्णाचलनिवासिनी ॥१९२॥
स्वर्गदा स्वर्गरूपा च स्वर्गभाग्यप्रदायिनी। स्मरारिप्राणदात्री च स्मरारिहृदयप्रिया ॥१९३॥
स्मृतिः स्मृतिस्वरूपा च स्मृतिगम्या स्मृतिप्रिया। स्मृतिगम्या स्मृतिप्राणा स्मृतिश्रुतिस्वरूपिणी ॥१९४॥
स्मररूपा स्मरारातिः स्मरजीवनदायिनी। स्मरणोन्मादिनी स्मारा स्मरांकुरितमानसा ॥१९५॥

---

(९६३) (क) स्वरूपा- आफ्नै दिव्यरूपले समन्वित, (ख) सुस्वरूपा- अरूलाई प्यारो लाग्ने रूप लिएर प्रकट हुनुहुने, (ग) सुकान्तिकुचमण्डला- अत्यन्त आकर्षक कुचमण्डलले सुहाएकी, (९६४) (क) सुमतिः- अत्यन्त बुद्धिमती, (ख) सुमतिप्रख्या- अत्यन्त उत्तम बुद्धिको प्रचार गर्नुहुने, (ग) सुमतेर्दायिनी- अरूलाई उत्तम बुद्धिको उपदेश गर्नुहुने, (घ) सुधा- अमृतमयी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१८९॥

(९६५) (क) सकला- सम्पूर्ण कलाले सुहाएकी, (ख) सकलाधारा- कलासहितका चन्द्रमाको प्रकाशको आश्रय बनेकी, (ग) सकलानन्ददायिनी- सबैलाई आनन्द दिने, (९६६) (क) सुचिन्ता- कल्याणकारी चिन्तनले अनुप्राणित भएकी, (ख) सुचरित्रा- प्रथम, मध्यम र उत्तम चरित्रले सम्पन्न भएकी, (ग) सुपुण्यजनवन्दिता- उत्तम राक्षस, यक्ष, यक्षेश्वर एवं गन्धर्वहरूद्वारा आराधना गरिएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१९०॥

(९६७) (क) सावित्री- गायत्री- (ख) सावित्री- संसारलाई पैदा गराउने आमा, (ग) सवितृमूर्तिपूजिता- सूर्यको मण्डलमा पूजा गरिएकी, (९६८) (क) सुमनाः- उत्तम मन भएकी, (ख) सुमनोराध्या- उत्तम पुष्पले देवताहरूद्वारा आराधनीया, (ग) सुमनोगणवन्दिता- देवताहरूद्वारा नमस्कार गरिएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१९१॥

(९६९) (क) शामनी- शान्तिका रूपमा रहेकी वा दक्षिणदिशाका रूपमा रहेकी, (ख) शमनी- रातका रूपमा रहेकी, (ग) शामा- शान्तिबाट पैदा हुने प्रसन्नता र प्रगतिका रूपमा रहेकी, (घ) सामान्यजनभाविता- सर्वसाधारण नरनारीद्वारा पूजित, (९७०) (क) स्वर्णप्रभा- सुनको झैं कान्ति भएकी, (ख) स्वर्णवर्णा- सौवर्णी कान्तिमयी, (ग) स्वर्णाचलनिवासिनी- सुमेरुपर्वतमा रहनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१९२॥

(९७१) (क) स्वर्गदा- पुण्यात्मालाई स्वर्गमा पुऱ्याउनुहुने, (ख) स्वर्गरूपा- स्वर्गकै रूपमा रहेकी, (ग) स्वर्गभाग्यप्रदायिनी- स्वर्गमा जान योग्य सौभाग्य दिनुहुने, (९७२) (क) स्मरारिप्राणदात्री- भगवान् शिवलाई जीवन्त तुल्याउनुहुने, (ख) स्मरारिहृदयप्रिया- शिवको हृदयमा प्रियाका रूपमा रहनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१९३॥

(९७३) (क) स्मृतिः- स्मरण गर्ने शक्तिका रूपमा रहेकी, (ख) स्मृतिस्वरूपा- मनु आदि आचार्यहरूद्वारा रचित अनेकौं स्मृतिका रूपमा रहेकी, (ग) स्मृतिगम्या- स्मृतिवाक्यहरूद्वारा जानिनुहुने, (घ) स्मृतिप्रिया- स्मृतिनिर्दिष्ट आचार, विचार र व्यवहार मन पराउनुहुने, (९७४) (क) स्मृतिगम्या- निरन्तर सम्झना गरिरहँदा दर्शन दिनुहुने, (ख) स्मृतिप्राणा- स्मृति वा धर्मशास्त्रलाई प्राणसमान महत्त्व दिनुहुने, (ग) स्मृतिश्रुतिस्वरूपिणी- श्रुति र स्मृतिका रूपमा रहेर सनातनधर्मको रक्षा गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१९४॥

(९७५) (क) स्मररूपा- कामतत्त्वका रूपमा रहेर सृष्टि सञ्चालन गर्नुहुने, (ख) स्मरारातिः- कामदेवका शत्रु सदाशिवका रूपमा रहनुभएकी, (ग) स्मरजीवनदायिनी- शिवजीले कामदेवलाई खरानी तुल्याउनुभएपछि शिवजीसँग प्रार्थना गरी कामदेवलाई नयाँ जीवन दिनुहुने, (९७६) (क) स्मरणोन्मादिनी- भक्तहरूलाई नामस्मरण संकीर्तन गर्दा उन्मत्त तुल्याउनुहुने, (ख) स्मारा- नयनप्रीति, चित्तासङ्ग, सङ्कल्प, निद्रानाश, तनुता, विषयनिवृत्ति, लज्जाहानि, उन्माद, मूर्च्छा र मरणजस्ता दशप्रकारका कामदशाका रूपमा रहनुहुने, (ग) स्मराङ्कुरितमानसा- मनमा कामतत्त्वलाई अङ्कुरित गराउनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१९५॥

सरसा सारसाङ्गी च सरसीभारसारिणी। सारसाचारसन्तुष्टा सारङ्गचारुलोचना ॥१९६॥
संसारसारसंसारा संसारभयहारिणी। संसारनिस्तारकर्त्री संसारपापनाशिनी ॥१९७॥
संसारमूलशक्तिश्च संसारसाररूपिणी। सर्वसङ्ग्रामजयिनी सर्वशक्तिस्वरूपिणी ॥१९८॥
सुमुखी च सुवक्षोजा सुचारुकुटिलेक्षणा। सुभ्रूरुसुवचोवीची सुनासा सुविलोचना ॥१९९॥
सर्वव्याधिप्रशमनी सर्वविघ्नविनाशिनी। सर्वारम्भसमारम्भा सर्वसम्भाररूपिणी ॥२००॥
सालसाङ्गी सालकास्या महार्थार्थसुसाधिनी। सर्वमुक्तिस्वरूपा च सर्वरक्षास्वरूपिणी ॥२०१॥
हैमा हैमवती हैमी हिमाचलनिवासिनी। हिमाचलसुता हीरा हेमालङ्कारधारिणी ॥२०२॥

---

(९७७) (क) सरसा– रसब्रह्ममयी, (ख) सारसाङ्गी– सारस पक्षीसमान अङ्ग भएकी, (ग) सरसीसारभारिणी– सरोवरको सारतत्त्व चयन गर्ने सारसीका रूपमा रहनुभएकी, (९७८) (क) सारसाचारसन्तुष्टा– सारस पक्षीको कामाचार अँगाली तुष्ट हुनुभएकी, (ख) सारङ्गचारुलोचना– मृगका आँखासमान सुन्दर आँखा भएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१९६॥

(९७९) (क) संसारसारसंसारा– संसारको सारतत्त्व अँगालेर लोककल्याणमा अग्रसर हुनुहुने, (ख) संसारभयहारिणी– संसारको डर–त्रासबाट मुक्त गराउनुहुने, (९८०) (क) संसारनिस्तारकर्त्री– संसार सागरबाट पार लगाउनुहुने, (ख) संसारपापनाशिनी– संसारका पाप नाश गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१९७॥

(९८१) (क) संसारमूलशक्तिः– संसारकी प्रधान शक्ति प्रकृतिका रूपमा रहनुभएकी, (ख) संसारसाररूपिणी– संसारकी सारतत्त्व ममतामयी आमाका रूपमा रहेकी, (९८२) (क) सर्वसङ्ग्रामजयिनी– सम्पूर्ण युद्धमा विजय प्राप्त गर्नुहुने, (ख) सर्वशक्तिस्वरूपिणी– सबै शक्तिहरूका रूपमा रहेकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१९८॥

(९८३) (क) सुमुखी– सुन्दर मुखमण्डलद्वारा सुहाएकी, (ख) सुवक्षोजा– सुन्दर कुचयुगल भएकी, (ग) सुचारुकुटिलेक्षणा– सुन्दर एवं आकर्षक कटाक्षले युक्त भएकी, (९८४) (क) सुभ्रूरुसुवोवीची– सुन्दर आँखीभौं, तिघ्रा र आकर्षक वचनलहरीले सुहाएकी, (ख) सुनासा– सुन्दर नासिका भएकी, (ग) सुविलोचना– सुन्दर नयनयुगल भएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥१९९॥

(९८५) (क) सर्वव्याधिप्रशमनी– सम्पूर्ण रोग नाश गर्नुहुने, (ख) सर्वविघ्नविनाशिनी– सबै किसिमका विघ्न नाश गर्नुहुने, (९८६) सर्वारम्भसमारम्भा– सबै आरम्भ गरिने कार्यहरूको मूलतत्त्वका रूपमा रहेकी, (ख) सर्वसम्भाररूपिणी– सम्पूर्ण यज्ञ आदि शुभकार्यका सम्पादक उपकरणहरूका रूपमा रहेकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥२००॥

(९८७) (क) सालसाङ्गी– यौवनमदका कारण अङ्गअङ्गमा आलस्य छाएकी, (ख) सालकास्या– केशको केही भाग मुखमण्डलमा फैलिदा अत्यन्त राम्री देखिनुहुने, (ग) महार्थार्थसुसाधिनी– महान् उद्देश्यका लागि पुरुषार्थ प्रवर्तन गर्नुहुने, (९८८) (क) सर्वमुक्तिस्वरूपा– सम्पूर्ण प्राणीहरूलाई संसारबाट मुक्त गर्न मुक्तिको स्वरूप लिनुहुने, (ख) सर्वरक्षास्वरूपिणी– सबैका रक्षाका लागि रक्षाकै रूपमा प्रकट हुनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥२०१॥

(९८९) (क) हैमा– सुवर्णकान्तिले सुहाएकी,, (ख) हैमवती– हिमालयकी कन्या, (ग) हैमी– स्वर्णमयी, (घ) हिमाचलनिवासिनी– हिमालयमा बस्नुहुने, (९९०) (क) हिमाचलसुता– हिमालयपर्वतकी छोरी (ख) हीरा– हीरा धारण गर्नुहुने अथवा महादेवका साथ रहनुहुने, (ग) हेमालङ्कारधारिणी– सुवर्णनिर्मित अलङ्कार धारण गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥२०२॥

हिता हितार्थसंयुक्ता हितकर्त्री हितार्थदा। हरधीश्च हराराध्या हरानन्दा हरोत्सुका ॥२०३॥
हारिणी हारसम्पन्ना हरिहारविभूषणा। हरिणी हररूपा च हरिराजनिवासिनी ॥२०४॥
हारस्था हरियुक्तिश्च ह्रींकाराक्षररूपिणी। क्षमा क्षमावती क्षान्तिः क्षेत्रधर्मप्रवर्धिनी ॥२०५॥
क्षोणी क्षोभस्वरूपा च क्षुधाक्षीमूर्त्तिधारिणी। क्षयिणी क्षयकर्त्री च क्षयकरी क्षयङ्करी ॥२०६॥
क्षेमङ्करी क्षेममूर्त्तिः क्षमा क्षान्तिः क्षया क्षमा। इतीदं परमं गुह्यं नाम्नामष्टसहस्रकम् ॥२०७॥
गुह्येश्वर्या महाभाग शिवेनोक्तं घटोद्भव। एतस्य पठनाद्वापि धारणाद्वा विशेषतः ॥२०८॥
शिवतुल्यो भवेद्विप्र नात्र कार्या विचारणा। पुत्रार्थी पुत्रमाप्नोति धनार्थी लभते धनम् ॥२०९॥

---

(९९१) (क) हिता– हित गर्ने भावना र आचार भएकी, (ख) हितार्थसंयुक्ता– हित गर्ने सामग्रीले सुहाएकी, (ग) हितकर्त्री– सधैँ सबैको हित गर्ने, (घ) हितार्थदा– हित गर्ने उपकरण र विषय प्रदान गर्नुहुने, (९९२) (क) हरधीः– बुद्धिमा निरन्तर भगवान् शिवलाई धारण गर्ने, (ख) हराराध्या– भगवान् शिवद्वारा आराधना गरिनुहुने, (ग) हरानन्दा– शिवलाई आनन्द दिनुहुने अथवा शिवबाट आनन्द लिनुहुने, (घ) हरोत्सुका– शिवप्रति उत्सुक हुनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥२०३॥

(९९३) (क) हारिणी– अत्यन्त रूपवती अथवा हार धारण गर्नुहुने, (ख) हारसम्पन्ना– मोतीको हार लगाउनुहुने, (ग) हरिहारविभूषणा– भगवान् हरिको हारका रूपमा रहेको वनमालालाई अलङ्कारका रूपमा धारण गर्नुहुने, (९९४) (क) हरिणी– महालक्ष्मीका रूपमा रहेकी, (ख) हररूपा– शिवजीका रूपमा रहेकी, (ग) हरिराजनिवासिनी– सिंहराजको पीठमा सवार हुनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु॥२०४॥

(९९५) (क) हारस्था– मोतीको मालामा आकर्षणशक्तिका रूपमा रहनुभएकी, (ख) हरियुक्तिः– भगवान् हरिकी संसारपालन गर्ने योजना सम्पन्न गर्ने युक्तिका रूपमा रहनुभएकी, (ग) ह्रींकाराक्षररूपिणी– शक्तिको मूलमन्त्र वा बीजमन्त्र 'ह्रीं'का रूपमा रहनुभएकी, (९९६) (क) क्षमा– पृथिवी अथवा सहनशीलताका रूपमा रहेकी, (ख) क्षमावती– क्षमाशक्तिकी स्वामिनी, (ग) क्षान्तिः– क्षमातत्त्वका रूपमा रहेकी, (घ) क्षेत्रधर्मप्रवर्तिनी– सम्पूर्ण जीवहरूले प्रकृतिभित्र रही गर्नुपर्ने कर्तव्य र धर्मको प्रवर्तन गर्नुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥२०५॥

(९९७) क्षोणी– पृथिवीका रूपमा रहनुभएकी, (९९८) क्षोभस्वरूपा– मनको तीव्र पीडा एवं हडवडीका रूपमा रहनुहुने, (९९९) क्षुधाक्षीमूर्तिधारिणी– आँखाबाट काम र भोकको तिर्सना प्रकट गर्ने निरीह नारीको मूर्ति धारण गर्नुहुने, (१०००) क्षयिणी– विनाशशील प्रकृतिका रूपमा रहनुहुने, (१००१) क्षयकर्त्री– संसारको महाप्रलय गराउनुहुने, (१००२) क्षयकरी– क्षयरोग प्रकट गर्नुहुने, (१००३) क्षयङ्करी– नामरूपात्मक जगत्को क्षय गराउनुहुने भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु ॥२०६॥

(१००४) क्षेमङ्करी– महाविद्या र महापुरुषहरूको कल्याणकारिणी शक्तिका रूपमा रहनुहुने, (१००५) क्षेममूर्तिः– सर्वकल्याण वा सर्वकुशलताकी मूर्तिका रूपमा रहनुहुने, (१००६) क्षमा– सहनशीलता र कुशलताकी आधार बन्नुभएकी, (१००७) क्षान्तिः– क्षमा धर्ममा तत्पर हुनुहुने, (१००८) क्षया– क्षमा र क्षान्तिको आश्रयका रूपमा रहनुभएकी भगवती गुह्येश्वरीको चरणकमलमा म प्रणाम गर्दछु। यसरी भगवती गुह्येश्वरीका परम गोपनीय १००८ नाम बताएँ ॥२०७॥

हे अगत्स्य ! गुह्येश्वरीका यी १००८ नाम मलाई भगवान् शिवले उपदेश गर्नुभएको हो। यस सहस्रनामको पाठ वा धारणा गर्नाले साधक विशेषरूपमा शिवसमान बन्दछ भन्ने कुरामा कुनै विचार गर्नु पर्दैन। पुत्रको कामना गर्नेले पुत्र प्राप्त गर्दछ र धनको चाहना गर्नेले धन प्राप्त गर्दछ ॥२०८–२०९॥

कन्या वरमवाप्नोति वरः कन्यामनुत्तमाम्। विद्यार्थी लभते विद्यां मुक्त्यर्थी मुक्तिमाप्नुयात् ॥२१०॥
बन्ध्यापि लभते पुत्रमेतस्य श्रवणाद्विज। राजानो राजपुत्राश्च वशमायन्ति दर्शनात् ॥२११॥
यः पठेत्पाठयेद्वापि शृणुयाद्वापि यो नरः। प्रातः कालेऽथ मध्याह्ने सायंकालेऽथवा पुनः ॥२१२॥
निशीथे वापि पठनात् गुह्येशी सुप्रसीदति। इदं गुह्यतरं देव्याः शिववक्त्राद्विनिर्गतम् ॥२१३॥
यस्मै कस्मै न दातव्यं न वक्तव्यं कदाचन। अत्यन्तगुरुभक्ताय दान्ताय सत्यवादिने ॥२१४॥
भक्तियुक्ताय दातव्यं ब्राह्मणाय विशेषतः। अष्टम्यां च चतुर्दश्यां नवम्यां भौमवासरे ॥२१५॥
एतस्य पठनाद्देवि रुद्रतुल्यो भवेन्नरः ॥२१६॥❀

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे गुह्येश्वरीसहस्रनाममालायुतो द्विपञ्चाशदुत्तरशततमोऽध्यायः ॥१५२॥

---

हे अगत्स्य ! गुह्येश्वरी सहस्रनामको पाठ गर्नाले वा धारणा गर्नाले उत्तम कन्याले उत्तम वर प्राप्त गर्दछिन् र उत्तम वरले उत्तम कन्या प्राप्त गर्दछन्। यसैगरी विद्याको कामना गर्ने विद्यार्थीले उत्तम विद्या पाउँछन् र मुक्तिको कामना गर्नेले मुक्ति लाभ गर्दछन्। गुह्येश्वरी सहस्रनाम श्रवण गर्नाले बाँझी महिलाले पनि पुत्र प्राप्त गर्दछिन् र उनले हेर्नासाथ राजा र राजकुमार वशमा आउँछन्। प्रातः, मध्याह्न अथवा सायंकालमा जुन पुरुषले यो सहस्रनाम पाठ गर्दछ अथवा पाठ गर्न लगाउँछ अथवा जसले श्रवण गर्दछ अथवा मध्यरातमा पाठ गर्दछ, ती पाठ र श्रवणबाट भगवती गुह्येश्वरी प्रसन्न हुनुहुन्छ। शिवजीको मुखबाट प्रकट भएको यो गुह्येश्वरी सहस्रनाम अत्यन्त गोपनीय छ॥२१०-२१३॥

यो गुह्येश्वरी सहस्रनाम जो कोही मानिसलाई दिनुहुँदैन र भन्नुहुँदैन। अत्यन्त गुरुभक्त, इन्द्रियविजयी, सत्यवादी एवं भक्तिमान् पुरुष र विशेषरूपमा ब्राह्मणलाई गुह्येश्वरी सहस्रनाम दिनुपर्दछ। अष्टमी, चतुर्दशी एवं नवमी तिथि र मङ्गलवारका दिन यस सहस्रनामको पाठ गर्नाले मानिस रुद्रसमान बन्दछ॥२१४-२१६॥[1]

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा गुह्येश्वरीसहस्रनामस्तोत्रयुक्त
एकसय बाउन्नौं अध्याय पूरा भयो।

---

❀ *यो गुह्येश्वरी सहस्रनाम अमोघ फलदायक छ। नाममालाका प्रत्येक नामको छुट्टाछुट्टै गणना गर्दा १३०० भन्दा बढी संख्या हुन्छ। यसमा शब्दसाम्य र अर्थसाम्य भएका अथवा शब्दतः र अर्थतः दोहोरिएका अनेक नाममन्त्र रहेका छन्। सम्भवतः ती सबै दोहोरिएकालाई हटाउँदा १००८ नाम भई सहस्र नाम संज्ञा अवश्य सार्थक हुनेछ। यस सहस्रनामका शब्दहरूको अनुवाद गर्दा १३०० वा त्यसभन्दा बढी संख्या नभई १००८ मात्र होस् भन्ने अभिप्रायले नामसंख्या ८५३ देखि ९९७ सम्म एउटा नामका अङ्कका रूपमा २ वा ३ नाम रहने गरी पहिलो नामलाई मात्र सम्बद्ध नामसंख्यामा समावेश गरिएको छ। यो कार्य सहस्रनामको संज्ञालाई सार्थक गराउने उद्देश्यले गरिएको हो।*

# त्रिपञ्चाशदुत्तरशततमोऽध्यायः

## गुह्येश्वरशिवलिङ्गमाहात्म्यम्

### स्कन्द उवाच

भूयोऽगमद्विरूपाक्षो यत्र गुह्येश्वरो विभुः। गुह्येश्वरीमहातीर्थे स्नात्वा भक्त्या घटोद्भव ॥१॥
राधशुक्लचतुर्दश्यां भक्त्या पञ्चोपचारकैः। गुह्येश्वरीं[1] महारात्रौ गुह्येश्वरमपूपुजत् ॥२॥
सम्पूज्य विधिवल्लिङ्गमपृच्छन्नेमुनिं निशि। लिङ्गस्य चैव देव्याश्च माहात्म्यं भक्तितो मुदा ॥३॥
आकर्ण्य तद्वचोऽगस्त्य ! विरूपाक्षस्य नेमुनिः। व्याजहार तदा वाक्यं तन्माहात्म्यं प्रकाशयन्[2] ॥४॥

### ऋषिरुवाच

अगोचरमहादेव्याश्चागोचरस्य शूलिनः। तथाऽप्रत्यक्षरूपायाः कथं वच्मि विरूपदृक् ॥५॥
मनसा कर्मणा वाचा भक्तिवर्जितदेहिनाम्। लिङ्गस्यागोचरायाश्च ते कथं वच्म्यगोचरम् ॥६॥
योगीश्वरस्य योगिन्या महायोगैश्च योगिनाम्। अप्यल्पप्राप्तरूपाया माहात्म्यं वच्म्यहं कथम् ॥७॥
तथापि योगरूपाया माहात्म्यं वच्म्यहं शृणु। देव्याश्चाऽव्यक्तरूपाया लिङ्गस्यैतदपि ध्रुवम् ॥८॥
गुह्येश्वर्या महादेव्या गुह्येश्वरस्य सिद्धिभाक्। अस्याश्चास्मात्सुरैर्लब्धान् वरान् शृणु पुरा द्विज ॥९॥
विरिञ्चिना[3] ब्रह्मपदं वैकुण्ठं विष्णुना पुनः। रुद्रेण व्यापकं लब्धं शङ्करत्वञ्च सर्वदा ॥१०॥
दिक्पतिभिश्च लब्धं वै दिक्पालत्वं[4] निरन्तरम्। एतस्या योगरूपायाः प्रसादाद्धि न संशयः ॥११॥

---

## अध्याय - १५३

### गुह्येश्वर शिवलिङ्गको माहात्म्य

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! त्यसपछि ती विरूपाक्षले जहाँ गुह्येश्वर भगवान् बस्नुहुन्थ्यो, त्यसै ठाउँमा गएर गुह्येश्वरी महातीर्थमा भक्तिपूर्वक स्नान गरे। उनले वैशाखशुक्ल चतुर्दशीका दिन भक्तिपूर्वक पञ्चोपचार विधिले रातमा भगवती गुह्येश्वरीका साथ बस्नुभएका भगवान् गुह्येश्वरको पूजा गरे। उनले राति विधिपूर्वक लिङ्गको पूजा गरेर प्रसन्न हुँदै भक्तिपूर्वक नेमुनिसित देवी र लिङ्गको माहात्म्य सोधे। हे अगस्त्य मुनि ! विरूपाक्षको यस्तो भनाइ सुनेर त्यस समयमा नेमुनिले पनि लिङ्ग र देवीको माहात्म्यको स्तुति गर्दै भन्नुभयो ॥१-४॥

नेमुनिले भन्नुभयो – हे विरूपाक्ष ! महादेवी अदृश्य हुनुहुन्छ, भगवान् शङ्कर पनि अदृश्य हुनुहुन्छ। जसको रूप नै अप्रत्यक्ष छ अर्थात् गुप्त छ, उहाँहरूको माहात्म्य म कसरी बताऊँ ? मन, कर्म र वचनको विषयभन्दा पर, भक्तिशून्य मानिसहरूका लागि अदृश्य देवी र लिङ्गका बारेमा म तिमीलाई के कुरा बताऊँ ? योगीहरूले ठूला-ठूला योगद्वारा जसको स्वरूपको थोरैमात्र ज्ञान गरेका हुन्छन्, त्यस्ता योगीश्वर र योगिनीको माहात्म्य मैले कसरी बताऊँ? तथापि योगको स्वरूप धारण गर्ने अव्यक्तस्वरूपा देवीको र यस लिङ्गको माहात्म्य म तिमीलाई अवश्य बताउँछु। हे सिद्ध विरूपाक्ष ! अघि यिनै महादेवी गुह्येश्वरी र गुह्येश्वरको अनुग्रहबाट देवताहरूले वर पाएका थिए, त्यो सुन ॥५-९॥

गुह्येश्वरी र गुह्येश्वरकै अनुग्रहबाट अघि ब्रह्माजीले सदाका लागि ब्रह्मपद पाउनुभयो, भगवान् विष्णुले वैकुण्ठ पाउनुभयो भने भगवान् शङ्करले सर्वत्र व्यापकता र शङ्करत्व प्राप्त गर्नुभएको थियो। योगरूपा उहाँकै अनुग्रहबाट दिशाका मालिकहरूले दिशालाई पालन गर्न सक्ने सामर्थ्य निरन्तर प्राप्त गरिरहेका छन्, यसमा कुनै सन्देह छैन ॥१०-११॥

---

१. देव्या सह, इति न.सं.पु.पाठः।
२. प्रशंसयन्, इति न.सं.पु.पाठः।
३. ब्रह्मणा, इति न.सं.पु.पाठः।
४. दिशां पाल्यम्, इति न.सं.पु.पाठः।

ऋषिभिश्चाऽर्हणत्वञ्च सिद्धैरजस्रजीवनम्[५]। स्वभक्तेभ्यो ददौ देवी सिद्धेभ्यश्च तदीप्सितम्[६] ॥१२॥
कयाचिच्च वरो लब्धश्चैतस्याश्च[७] पुरा शृणु। भर्त्रा च[८] त्यक्तयाऽवश्यं तथाऽन्यैस्त्यक्तरूपया ॥१३॥
सा स्वच्छन्दगतिश्चाऽभूद् भारते पूर्वजन्मनि। पतिं विहाय नित्यं वै प्रियाध्यक्षे निशाचरी ॥१४॥
अन्यैः सा पुरुषैः सार्द्धं रतिञ्चकार नित्यशः। मृते गङ्गातटे पत्यौ सा चाऽभूत्सहगामिनी ॥१५॥
गङ्गातटमृतेः[९] पुण्याद्भर्त्तुः सङ्गमनात्पुनः। बभूव तस्य राज्ञो वै महिषी सा विरूपदृक् ॥१६॥
नाऽपश्यत्तन्मुखं भर्त्ता पूर्वजन्मविपाकतः। दुःखातुरा ततोऽभूत्सा पृथक्शय्या निरन्तरम् ॥१७॥
तदा यतिमुखात् सा च[१०] ह्यश्रृणोद्धि विरूपदृक्। एतस्याश्चैव माहात्म्यं वश्यस्तम्भनशंसनम् ॥१८॥
पिङ्गला सा महारात्रौ विनिःसृता पुरात्तदा। एकाकिनी समं सख्या चैनां विलोकयितुं[११] खलु ॥१९॥
देशाद् देशान्तरं भ्रान्त्वा लोकान् पप्रच्छ तत्पथम्[१२]। अत्र प्राप्तवती सा वै ईषे कृष्णाष्टमीदिने ॥२०॥
तत्र सस्नौ समं सख्या पिङ्गला सा च भक्तितः। गुह्येश्वरीमहातीर्थे सम्पूज्य विधिवन्मुदा ॥२१॥
लिङ्गेन संयुतां देवीं सम्प्रेक्ष्य सा ननाम च। कृष्णाष्टम्यां निराहारा चाऽपूपुजन्महानिशि ॥२२॥
विशेषेण पतिश्चाऽन्यो वश्यो भवतु मे ध्रुवम्। एवमुक्त्वा धिया स्वान्ते भावमास्थाय चेतसा ॥२३॥
नानापुष्पैः समानीतैरर्चयित्वाशु भक्तितः। नवम्यां सा महारात्रौ पार्वतीं समपूपुजत् ॥२४॥

---

भगवती देवीले ऋषिलाई पूज्यता र सिद्धहरूलाई लामो जीवन पाउने वर दिनुभयो। त्यस्तै भक्त सिद्धहरूलाई उनीहरूले चाहेको वर दिनुभयो। पति र अरूले पनि त्याग गरिएकी कुनै स्त्रीले अघि यिनै देवीबाट वर पाएकी थिइन्, त्यो कथा सुन ॥१२-१३॥

हे विरूपाक्ष ! यसै भारतवर्षमा पूर्वजन्ममा त्यो स्त्री पतिलाई छाडेर रातमा जथाभावी हिँडेकाले निशाचरी भई। अरू पुरुषका साथ त्यसले सधैँ रतिक्रीडा गरी। पति मरेपछि भने पतिका साथै गङ्गाको तीरमा सती गई। गङ्गाको तटमा मरेको पुण्य र पतिका साथै सती गएको कारणले गर्दा त्यो स्त्री अर्को जन्ममा राजाकी स्त्री भई। पूर्वजन्मको दुष्कर्मले गर्दा पतिले त्यसको मुखै हेरेन। त्यस स्त्रीको सुत्ने ओछ्यान छुट्टै हुन्थ्यो। यस्तो व्यवहारले त्यो स्त्री दुःखी भई ॥१४-१७॥

हे विरूपाक्ष ! त्यसले कुनै योगीको मुखबाट वशीकरणशक्ति र स्तम्भनशक्ति दिन सक्ने सामर्थ्य भएकी भगवती गुह्येश्वरीदेवीको माहात्म्य सुनी। त्यो पिङ्गलानामकी नारी मध्यरातमा शहरबाट निस्किएर सङ्गिनीका साथ देवीको दर्शन गर्न हिँडी। एक देशबाट अर्को देश पार गर्दै मानिसहरूसँग बाटो सोध्दै त्यो स्त्री यहाँ आइपुगी। त्यस पिङ्गलाले आश्विनकृष्ण अष्टमीका दिन सङ्गिनीका साथमा रहेर गुह्येश्वरी महातीर्थमा स्नान गरी र लिङ्गले युक्त भएकी देवीको पनि विधिपूर्वक पूजा गरी। कृष्णाष्टमीका दिन त्यस स्त्रीले लिङ्गले युक्त भएकी देवीलाई देखेर निराहार बसेर रातमा भगवतीलाई नमस्कार गरी र पूजा गरेकी थिई। 'विशेष गरी मेरो पति मेरो वशमा रहोस्' भन्दै मनमा यही कामना गर्दै उसले विभिन्न किसिमका फूलहरू ल्याएर पूजा गरेपछि फेरि नवमीको रातमा पार्वतीको पूजा गरी ॥१८-२४॥

---

५. सिद्धेभ्योऽजस्रजीवनम्, इति न.सं.पु.पाठः।
६. स्येप्सितं तथा, इति न.सं.पु.पाठः।
७. वरं लब्धञ्चैतस्याश्च, इति न.सं.पु.पाठः।
८. पतिना, इति न.सं.पु.पाठः।
९. गङ्गातीरे मृतत्, इति न.सं.पु.पाठः।
१०. कश्चिद्यतिमुखात्सा च, इति न.सं.पु.पाठः।
११. प्रदर्शितुम्, इति न.सं.पु.पाठः।
१२. देशादेशान्तरं लङ्घ्य लोकानपृच्छत्तत्पथम्, इति न.सं.पु.पाठः।

अशृणोद् गगनाद्वाणीं पिङ्गले चेति तन्निशि[१३]। सिन्दूरं कज्जलञ्चैतद् प्रगृह्य भूषयानिशम् ॥२५॥
पिङ्गलेति वचः श्रुत्वा किमिति चकितेक्षणा। सिन्दूरं कज्जलञ्चाऽत्र ददर्श सा महानिशि ॥२६॥
तत्कज्जलञ्च सिन्दूरं साध्वी जग्राह तत्क्षणात्। तद्वाक्यं सा समाकर्ण्य हर्षविस्फारमानसा ॥२७॥
दशम्यां सा ततः प्रातः स्नात्वाऽभ्यर्च्य शिवां पुनः। चकार पारणं साध्वी सख्या सह वनोद्भवैः ॥२८॥
अभिधानं ततो भर्त्तुः सङ्गृह्य मनसा सती। देव्या मनुं पठन्ती सा भूषयामास चाननम् ॥२९॥
कुरु जन्मनि वश्यञ्च मत्पतिं सहसा शिवे। इत्युक्त्वा भूषयामास सा भालं लोचनं मुदा ॥३०॥
तत उमाञ्च सम्पूज्य परिक्रम्य स्तवैर्मुहुः[१४]। विनिर्ययौ ह्यतः साध्वी स्वदेशाय प्रहर्षिता[१५] ॥३१॥
पश्यन्ति स्मायने ये ये यान्तीं सुवदनां हि ताम्। तत्रैव मुमुहुस्ते ते संरुद्धगतयो[१६] भृशम् ॥३२॥
तत्प्रयोगेण राज्ञश्च चुक्षुभे च मनो भृशम्। सहस्रयोजनानाञ्च दूरस्थस्यापि सिद्धिभाक् ॥३३॥
राजा च मनसा क्षुब्धः प्रियामन्वेषयन् ततः[१७]। विनिर्ययौ पुराच्छीघ्रं हा पिङ्गले प्रिये त्विति ॥३४॥
सम्बोध्याऽमात्यसान्निध्ये पथि राजा जगाम ह[१८]। गङ्गातीरे ततः प्राप्ता पिङ्गला चैव सुन्दरी ॥३५॥
हा प्रिये भूपतिरित्थं कृत्वालिलिङ्ग तां प्रियाम्। क्व गताऽसि च मां त्यक्त्वा[१९] प्राणानां मे गरीयसी ॥३६॥

---

त्यसपछि उसले त्यसै रातमा आकाशवाणी सुनी– हे पिङ्गला ! यो सिन्दूर, गाजल र गहना लगाउने गर। यस्तो वचन सुनेर आश्चर्यमा परेकी त्यस पिङ्गलाले रातमा यताउति हेर्दा सिन्दूर र गाजल देखी। देवीको वाणी सुनेर हर्षले प्रफुल्ल चित्त भएकी त्यस पतिव्रता पिङ्गलाले तुरुन्तै गाजल र सिन्दूर धारण गरी। त्यसपछि दशमीका दिन बिहान स्नान गरेर पार्वतीको पूजा गरिसकेपछि उसले वनका कन्दमूलहरू ल्याएर सखीहरूका साथ पारणा गरी। त्यस पतिव्रताले मनमनै पतिको नाम लिएर देवीको मन्त्र जप्दै आफ्नो अनुहारको सिँगारपटार गरी ॥२५-२९॥

हे पार्वती ! जन्म-जन्ममा मेरा पतिलाई मेरो वशमा गराइदेऊ भनेर हर्षित हुँदै त्यसले निधार र आँखाको पनि सिँगारपटार गरी। त्यसपछि बारम्बार भवानीलाई परिक्रमा र नमस्कार गरेर त्यो पतिव्रता स्त्री प्रसन्न भएर आफ्नो देशतिर प्रस्थान गरी। वरका लागि प्रस्थान गर्दा बाटमा ज-जसले सुन्दर मुहार भएकी त्यस स्त्रीलाई देखे, तिनीहरू त्यसलाई हेर्दै ज्यादै मोहित भए। भगवतीले प्रदान गर्नुभएका गहना लगाएका कारणले हजार योजन टाढा रहेका ती राजाको पनि मन अत्यन्त चञ्चल भयो। मन चञ्चल भएपछि ती राजा पनि हा पिङ्गला ! हा प्रिया ! भन्दै पत्नीलाई खोज्न शहरबाट तुरुन्त बाहिर निस्किए ॥३०-३४॥

आफ्ना मन्त्रीहरूका सामु आफ्नी प्रियालाई यसरी सम्बोधन गर्दै राजा सुदन्त बाटो अघि बढ्दै थिए। यसरी जाँदै गर्दा गङ्गाजीको तटमा पुगेका बेला सुन्दरी पिङ्गला आउँदै गरेकी देखिइन्। पिङ्गला सुन्दरी गङ्गाको तीरमा आइपुगेकी थिइन्। प्राणभन्दा पनि श्रेष्ठ हे प्रिया ! तिमी मलाई छोडेर कहाँ गएकी थियौ ? भन्दै ती राजाले ती युवतीलाई आलिङ्गन गरे ॥३५-३६॥

---

१३. शर्वरीम्, इति न.सं.पु.पाठः।
१४. ततो वन्द्य भवानीं वै परिक्रम्य स्तवन्मुहुः, इति न.सं.पु.पाठः।
१५. हसन्मनाः, इति न.सं.पु.पाठः।
१६. स्थगितगतयः, इति न.सं.पु.पाठः।
१७. मम क्षोभस्ततो राजा चान्वेषितुं प्रियां प्रति, इति न.सं.पु.पाठः।
१८. एवं प्रोक्त्वा च मन्त्रिभी राजा सुदन्तो हि व्रजन् पथि, इति न.सं.पु.पाठः।
१९. त्यज्य, इति न.सं.पु.पाठः।

तस्मिन्काले ततः शक्रस्तत्रायया सुरैः समम्। रुरोध सहसा राज्ञीं नेतुं दिव्यं[२०] स्वमालयम् ॥३७॥
हा पिङ्गले साधु साधु व्रज स्वर्गं ममालयम्। सर्वदेवैः प्रवन्द्या त्वं भविष्यसि न संशयः ॥३८॥
इत्युक्त्वा च तनुं तस्याः स्प्रष्टुं करं ससार सः[२१]। क्षुब्धेन्द्रियश्च कामार्तः[२२] सम्प्रेक्ष्याशु वराङ्गिनीम् ॥३९॥
ततो देव्याः प्रसादात्सा शक्रञ्च समुवाच ह। मा मा स्पृश हि मां शक्र ![२३] पतिव्रतां कदापि च ॥४०॥
स्पृशसि यदि त्वं मां वै देव्याः प्रसादतो वृषन्। मम शापानलज्वालैर्भस्मसाच्च भविष्यसि ॥४१॥
इत्युक्त्वा प्रययौ साध्वी स्वराज्यं सहसा मुदा। शृण्वन्ती सर्वलोकानां[२४] सर्वत्र साधु साध्विति ॥४२॥
अनुययौ पतिस्तस्याः सैन्यैः समं नृपः प्रियः। दासवत् सेवमानः स उचे तां किं करोम्यहम्[२५] ॥४३॥
शक्रोऽपि च ययौ स्वर्गं भग्नमनोरथः पुनः। तस्याः शापभयात् खिन्न म्लानाननः[२६] सुरैः समम् ॥४४॥
बुभुजे सा मुदा राज्यं यावज्जीवं महासुखम्। वशे कृत्वा पतिं लोकान्पुत्रवती सुखैर्युता[२७] ॥४५॥
देहान्ते तां ततस्तत्र समास्थाय विमानके। समानिन्युश्च योगिन्यो देव्याः पुरं परात्परम् ॥४६॥
भूयः शृणु पुरा कश्चिन्मुक्तश्चात्र नरः परः। लिङ्गस्यास्य मुदा भक्त्या सेवनाद्धि विरूपदृक् ॥४७॥
आसीत्कश्चिद्धि चाण्डालो मिथिलायां विरूपदृक्। व्यङ्गो नाम च विख्यातो मीनजन्त्वन्तकोऽनिशम् ॥४८॥
द्विजातीनां समालोक्य सुधर्मसम्पदं तथा। धिग्धिगित्यवदन्नित्यञ्चाण्डालोऽसौ स्वविग्रहम् ॥४९॥
वैद्यमुखात्समाकर्ण्य काले प्राप्ते तदात्मनः। वाग्वत्यां गतवान् शीघ्रं सन्त्यक्तुं स्वकलेवरम् ॥५०॥

---

यसैबेला इन्द्र देवताहरूलाई साथमा लिएर त्यहाँ आए र ती नारीलाई आफ्नो स्वर्गमा लैजाने मनसायले राजाका साथमा राजदरबारतिर जान दिएनन्। ती सुन्दरीलाई देख्नासाथ विकल इन्द्रिय भएका इन्द्रले 'हे पिङ्गला ! स्याबास छ, स्याबास छ, स्वर्गको मेरो दरबारतिर हिँड, सारा देवताले तिम्रो वन्दनागर्नेछन्, यसमा शङ्का छैन' भनेर कामुक हुँदै त्यस स्त्रीलाई स्पर्श गर्न हात अगाडि बढाए ॥३७–३९॥

देवीको अनुग्रह प्राप्त गरेकी पिङ्गलाले इन्द्रलाई भनी – "हे इन्द्र ! म पतिव्रता नारी हुँ, त्यसैले मलाई कुनै अवस्थामा पनि स्पर्श नगर। हे इन्द्र ! यदि तिमीले मलाई छोयौ भने देवीको अनुग्रहअनुसार मेरो सरापको ज्वालाले तिमी भस्म हुनेछौ।" यति भनेर ती पतिव्रता नारी सबै जनताबाट स्यावासी ग्रहण गर्दै आफ्नो राज्यतिर गइन् ॥४०–४२॥

सेनाहरूलाई साथमा लिएर तिनका पति राजा पनि आफ्नी प्यारीको पछि लागे। त्यसपछि उनले दासजस्तै बनेर पिङ्गलालाई सम्बोधन गर्दै 'हे प्रिया ! के सेव गरूँ ?' भन्न थाले। आफ्नो इच्छा पूर्ति गर्न असमर्थ बनेका इन्द्र पनि ती स्त्रीको सरापदेखि डराउँदै मलिन मुख लगाएर देवताहरूका साथमा स्वर्गतिर लागे। ती पिङ्गलाले पनि पति र प्रजालाई आफ्नो वशमा राखेर छोराछोरीसहित आनन्दित हुँदै बाँचुञ्जेल ठूलो सुखभोग गरिन्। मरेपछि योगिनीहरूले तिनलाई विमानमा राखेर उत्तम देवीको लोकमा लगे ॥४३–४६॥

हे विरूपाक्ष ! फेरि सुन– कुनै मानिसले अघि भक्तिपूर्वक यस लिङ्गको सेवा गरी मुक्ति प्राप्त गरेको थियो। अघि मिथिलामा व्यङ्ग नामले प्रसिद्ध भएको कुनै चाण्डाल थियो। ऊ सधैं माछा र अरू जीवजन्तु मारेर आफ्नो जीविका चलाउँथ्यो। त्यो चाण्डाल द्विजातिको धर्म र सम्पत्ति देखेर सधैं आफ्नो शरीरलाई 'धिक्कार छ, धिक्कार छ' भन्दथ्यो। त्यस चाण्डालले मर्ने बेलामा वैद्यको मुखबाट वाग्वतीको माहात्म्य सुनेको हुनाले शरीरत्याग गर्न ऊ वाग्वतीमा गयो ॥४७–५०॥

---

२०. समानेतुम्, इति न.सं.पु.पाठः।
२१. इत्युक्त्वा स्पर्शितुं तां वै शक्रः करं ससार सः, इति न.सं.पु.पाठः।
२२. क्षोभेन्द्रियश्च कामार्त्तः, इति न.सं.पु.पाठः।
२३. मा मा स्पर्शय मां शक्र !, इति न.सं.पु.पाठः।
२४. वादयन्सर्वलोकाश्च, इति न.सं.पु.पाठः।
२५. दासवत्सेवयंश्चाह किं कुर्वामः प्रिये वद, इति न.सं.पु.पाठः।
२६. शापभयोद्विग्नो म्लानसुखः, इति न.सं.पु.पाठः।
२७. सुखी सदा, इति न.सं.पु.पाठः।

तत्र गत्वा परस्मिन् मां[२८] विप्रं कुरु च वाग्वति। एवं सङ्कल्प्य तीरेऽसौ वाग्वत्यामजहात्तनुम् ॥५१॥
तत्पुण्यतोऽभवद्विप्रो जातिमात्रेण वै ततः। नाशय मम पापञ्च सङ्कल्पं कृतवानतः ॥५२॥
स नित्यं मृगयाशीलः सर्वजन्तुभयप्रदः। अनाचारे समारूढो मिथ्यावाक् खलु सर्वभुक् ॥५३॥
त्यक्तः स्वजातिभिर्विप्रो भ्रष्टाचारोऽभवत्सदा। विख्यातो ब्रह्मचाण्डालो ह्यतिक्रूरो हि जन्तुषु ॥५४॥
कञ्चिद्यतिं समासाद्य विनिर्ययौ पुराद्बहिः। तत्सम्पर्केण मुक्तोऽभूत् शौचतो ज्ञानमाप्तवान् ॥५५॥
अत्रासौ ब्रह्मचाण्डालः प्राप्तवान् यतिना सह। प्रेक्ष्य पशुपतिं शम्भुं वाग्वत्यां स्नातको मुहुः ॥५६॥
ईषे कृष्णचतुर्दश्यां तत्रैव स्नातको यतिः। चाण्डालं स्नापयामास तत्र विविशतुर्मुदा[२९] ॥५७॥
महालिङ्गं स गुह्याख्यमद्राक्षीज्जगदम्बिकाम्। ननाम दण्डवद् भूमौ भक्त्याष्टाङ्गैः परिक्रमन् ॥५८॥
लिङ्गस्पर्शादसौ[३०] सद्यो यानेन सतनुर्यतिः। उत्पपाताम्बरे शीघ्रं पुष्पासारो[३१] ववर्ष च ॥५९॥
नीयमानं गणैः सिद्धं द्योतमान[३२] रविं यथा। स्वाध्यक्षे गगनाद्विप्रः सोऽभूद्विरक्तमानसः ॥६०॥
यावन्मां नोद्धरेल्लिङ्गं तावत् स्थास्यामि शङ्कर[३३]। यथा यतिं गणा निन्युः स्पृहयेयं तथा प्रभो ![३४] ॥६१॥
सप्तजन्मार्जितैः पापैः स मुक्त एकवत्सरात्। स्पर्शनाद् गुह्यलिङ्गस्य यद्यपि मन्त्रवर्जितः[३५] ॥६२॥

---

त्यहाँ गएर उसले हे वाग्वती ! अर्को जन्ममा मलाई ब्राह्मण तुल्याइदिनुहोस् भन्ने सङ्कल्प गरेर वाग्वतीको तटमा शरीरत्याग गर्‍यो। उसले हे वाग्वती ! मेरो पाप नष्ट गर भन्ने सङ्कल्प गरेको थियो। त्यसै पुण्यका प्रभावले गर्दा त्यो जातिमात्रको ब्राह्मण भयो। ऊ सधैँ शिकार खेल्दथ्यो, सारा प्राणीहरूलाई तर्साउँथ्यो र दुराचारमा फसेको थियो। झुटो बोली बोल्थ्यो र जे पायो सोही खान्थ्यो। त्यो ब्राह्मण सदाका लागि आचारबाट पतित भइसकेको थियो। आफ्ना जातका मानिसहरूले उसलाई बहिष्कार गरे। प्राणीहरूमा ऊ कत्ति पनि दया देखाउँदैथ्यो ॥ उसलाई ब्रह्मचाण्डाल भन्दथे। अनि कुनै योगीलाई फेला पारेर उसैका साथ लागी त्यो शहरबाट बाहिर गयो। तिनै योगीको सङ्गतले गर्दा पापबाट मुक्त भई उसले पनि ज्ञान प्राप्त गर्‍यो ॥५१-५५॥

त्यो ब्रह्मचाण्डाल ती योगीका साथ यसै ठाउँमा आयो। वाग्वतीमा बारम्बार स्नान गरेर उसले भगवान् पशुपतिनाथको दर्शन गर्‍यो। आश्विन कृष्णचतुर्दशीका दिन ती दुबै जना वाग्वतीमा प्रवेश गरे। योगीले आफूले स्नान गरे र ब्रह्मचाण्डाललाई पनि स्नान गराए। त्यसले गुह्येश्वरनाम गरेको महालिङ्ग र भगवती जगदम्बिकाको दर्शन गर्‍यो। त्यसपछि यतिले त्यस लिङ्गको परिक्रमा गर्दै भूमिमा लम्पसार परेर आठै अङ्गले दण्डवत् प्रणाम गरे। यस लिङ्गको स्पर्श गरेको हुँदा ती योगी शरीरैसित यानमा चढेर सहर्ष आकाशतिर उडे। त्यस ठाउँमा पुष्पवृष्टि भयो ॥५६-५९॥

आफ्नै अघिल्तिर शिवगणहरूले सूर्यजस्तै चम्किला योगीलाई यानमा राखी लिएर गएको देख्दा त्यस ब्राह्मणको मनमा विरक्ति आयो र उसले पुकारा गर्‍यो – हे ईश्वर ! जबसम्म मेरो उद्धार हुँदैन त्यस बेलासम्म लिङ्गस्वरूप भएका हजुरको सेवा गर्दछु। जसरी योगीलाई तपाईंका गणहरूले शुभगतिमा पुर्‍याए, म पनि त्यसैगरी असल गतिमा पुग्न चाहन्छु भनी त्यसले पुकारा गरेको थियो। त्यस ब्रह्मचाण्डालले ती योगीले मन्त्रै नजपीकन पनि यसै लिङ्गको स्पर्शले गर्दा एकै वर्षमा सात जन्मसम्म गरेका पापबाट छुटकारा पायो ॥६०-६२॥

---

२८. तत्र गत्वा परत्रे माम्, इति न.सं.पु.पाठः।
२९. स्नापयद् ब्रह्मचाण्डालमत्र विविशतुर्मुदा, इति न.सं.पु.पाठः।
३०. एतल्लिङ्गस्पृशात्, इति न.सं.पु.पाठः।
३१. हर्षं पुष्पासारम्, इति न.सं.पु.पाठः।
३२. विद्योतयन्, इति न.सं.पु.पाठः।
३३. सर्वे त्वां तावदीश्वरः, इति न.सं.पु.पाठः।
३४. यथैव ते गणैर्नीतं स्पृहयेऽहं यतिं तथा, इति न.सं.पु.पाठः।
३५. एतल्लिङ्गस्पृशाद्धि वै चापि मन्त्रैर्विवर्जितः, इति न.सं.पु.पाठः।

रुद्राक्षान् वर्ष्मसु धृत्वा विभूत्या लिप्तगात्रकः[३६] । नानापुष्पाणि चाऽहृत्य प्रत्यहं समपूपुजत् ॥६३॥
ईषे कृष्णाष्टमीरात्रौ ददौ तस्मै वरं हरः । त्रिनेत्रं डमरुं शूलं मालां स्वसदृशीं तनुम् ॥६४॥
चकार पुष्पवृष्टिञ्च[३७] नानावाद्यं ननाद च । साधु साध्विति चाजस्रमभून्नादो विहायसि ॥६५॥
ततोऽसौ हर्षयुक्तात्मा प्रेक्ष्य स्वविग्रहं तदा । त्रिनेत्रं सायुधं स्तोतुं प्रचक्रमे हरं यथा ॥६६॥

ब्रह्मचाण्डाल उवाच

ॐगुह्येश्वर ! महादेव ! गुह्यरूप ! नमोऽस्तु ते । गुह्येश्वरि ! महादेवि गुह्याख्यायै नमोऽस्तु ते ॥६७॥
शिवशक्त्यात्मकं लिङ्गं धारयित्र्यै नमो नमः । शिवसम्मिलिताङ्गायै शिवात्मने शिवे नमः ॥६८॥
शिवाय शिवरूपाय शक्तिरूपाय ते नमः । मायायै शिवरूपायै धृतलिङ्गे ! नमो नमः[३८] ॥६९॥
योगेश्वराय योगाय योगानां पतये नमः । योगेश्वर्य्यै नमो देव्यै योगिनीकोटिसेविते ॥७०॥
सर्वागम्यचरित्राय चाऽपराय नमो नमः । वाङ्मनोऽगोचरायै तेऽयोनिजेऽगोचरे नमः ॥७१॥
ब्रह्मेश्वराय जीवाय सच्चिदानन्दरूपिणे । माये ह्युपाधिरूपायै ते तत्सत्प्रेरके नमः ॥७२॥
देहस्थाय च शर्वाय मायाधीनाय वै नमः । अन्तःस्थायै च मोहायै हराधीने नमोऽस्तु ते ॥७३॥
नमो व्यञ्जनरूपाय वागीशायाऽक्षराय च । मात्रायै शब्दरूपायै नादरूपे नमोऽस्तु ते ॥७४॥
मन्त्राय मन्त्रदेहाय मन्त्रपूज्याय वै नमः । कलायै बिन्दुरूपायै चाऽर्द्धमात्रे नमोऽस्तु ते ॥७५॥
ज्ञानप्रद महादेव मुक्तिप्रद नमोऽस्तु ते । क्षम्यतां[३९] मेऽपराधश्च भवानीशङ्करौ प्रभू ॥७६॥

---

यसो भन्दै त्यस ब्रह्मचाण्डालले खरानी शरीरमा घसेर रुद्राक्षहरू धारण गर्दै अनेक किसिमका फूलहरू ल्याएर दिनदिनै शिवजीको पूजा गऱ्यो । आश्विन कृष्ण अष्टमीको दिन राति महादेवले त्यस ब्रह्मचाण्डाललाई तीन आँखा, डमरु, त्रिशूल, माला र आफ्नो जस्तै शरीर हुने वरदान दिनुभयो । त्यसपछि फूलको वर्षा भयो । अनेकौं बाजाहरू बजे र 'धन्य ! धन्य !' भन्ने आवाज आकाशभरि गुञ्जियो । त्यसपछि आफूलाई दोस्रो महादेवजस्तो देखेर प्रसन्न हुँदै त्यस ब्रह्मचाण्डालले त्रिशूल हातमा लिने तीन आँखा भएका महादेवको स्तुति गऱ्यो ॥६३-६६॥

ब्रह्मचाण्डालले भन्यो – हे गुह्येश्वर ! हे महादेव ! हे गुह्यरूप ! हजुरलाई नमस्कार छ। हे गुह्येश्वरी ! हे गुह्या नाम गरेकी महादेवी ! हजुरलाई नमस्कार छ। शिव र शक्तिरूप लिङ्ग धारण गर्ने भगवतीलाई बारम्बार नमस्कार छ। हे पार्वती ! शिवजीसित तपाईंको अङ्ग मिलेको छ। यस्ती शिवस्वरूपा हजुरलाई नमस्कार छ। हे शङ्कर ! शिवस्वरूप भएका कल्याणकारक शक्तिरूप हजुरलाई नमस्कार छ। हे देवी ! शिवको रूप लिने शिवलिङ्गलाई धारण गर्ने मायारूपा हजुरलाई नमस्कार छ। योगका धनी, योगस्वरूप भएका योगेश्वरलाई नमस्कार छ। करोडौं योगिनीले सेवा गरिएकी, योगेश्वरी देवीलाई नमस्कार छ ॥६७-७०॥

सबैले जानेर नसक्ने चरित्र भएका, पारहीन हजुरलाई बारम्बार नमस्कार छ। मन र वचनले जान्न नसकिने, योनिबाट नजन्मिएकी, वचन र मनले ठम्याउन नसकिने हे देवी ! हजुरलाई नमस्कार छ। ब्रह्मका पनि ईश्वर भएका सत्, चित् र आनन्दस्वरूप लिने जीवस्वरूप शिवलाई नमस्कार छ। हे माया ! उपाधिस्वरूप लिएर सबैलाई प्रेरणा दिने हजुरलाई नमस्कार छ। शरीरभित्र रहेर मायाका अधीनमा बस्ने भगवान् शङ्करलाई नमस्कार छ। भित्र रहेकी शिवजीको अधीनमा बस्ने, मोहस्वरूप लिने हे भगवती ! हजुरलाई नमस्कार छ। व्यञ्जनको रूप लिने, वाणीका स्वामी अक्षरस्वरूप गुह्येश्वर हजुरलाई नमस्कार छ। नाद, शब्द र मात्राको रूप लिने मायारूपा हजुरलाई नमस्कार छ। मन्त्र रूप लिने, मन्त्र नै स्वरूप भएका र मन्त्रद्वारा पूज्य हे गुह्येश्वर ! हजुरलाई नमस्कार छ। कालरूप भएकी बिन्दु तथा अर्धमात्राको रूप लिने हे गुह्येश्वरी ! हजुरलाई नमस्कार छ। हे ज्ञान दिने महादेव ! हे मुक्तिदात्री भगवती ! हे भवानी शङ्कर प्रभु ! हजुरहरूलाई नमस्कार छ, मेरो अपराध क्षमा गर्नुहोस् ॥७१-७६॥

---

३६. विभूत्या लिप्तगात्रोऽसौ रुद्राक्षान् धार्य वर्ष्मसु, इति न.सं.पु.पाठः ।
३७. ववर्ष पुष्पवर्षञ्च, इति न.सं.पु.पाठः ।
३८. शिवलिङ्गधृते नमः, इति न.सं.पु.पाठः ।
३९. क्षमस्व, इति न.सं.पु.पाठः ।

सिद्धर्षिरुवाच

इत्येवं स्तूयमानौ च उमामहेश्वरौ यदा। आययुः प्रमथा व्योम्नो रुद्राज्ञयेह वै मुदा ॥७७॥
ततस्तं प्रमथा याने चाधाय त्वरितं द्विज। निन्युः शिवपुरं पूतं गीतवाद्यैः प्रमोदितम् ॥७८॥
सोऽभवद् ब्रह्मचाण्डालो रुद्रस्याऽनुचरः सुखी। एतल्लिङ्गप्रसादाद्वै युतोऽपि भूरिपातकैः[४०] ॥७९॥
अत ऊर्ध्वं प्रगच्छाशु किरातेशो हि यत्र च। तीर्थेषु च पुनः स्नाहि मृगस्थल्यां सरःसु च ॥८०॥
यो माहात्म्यं खलु हि शृणुयान्मानसेच्छाप्रदं वै गुह्येश्वर्य्या अपि कलुषभागेतदध्यायपुण्यम्।
आयुः कीर्त्तिं धनमपि यशः शत्रुनाशञ्च युद्धे प्राप्नोत्यार्यो हृदभिलषितं गुह्यसंज्ञाच्च[४१] शम्भोः ॥८१॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां
गुह्येश्वरीगुह्येश्वरयोर्माहात्म्यं नाम त्रिपञ्चाशदुत्तरशततमोऽध्यायः ॥१५३॥

---

नेमुनिले भन्नुभयो – यसरी ती ब्राह्मणले उमा र महेश्वरको स्तुति गरेपछि भगवान् शङ्करको निर्देशन अनुसार प्रसन्न हुँदै आकाशबाट प्रमथ आदि गणहरू यहाँ आए। त्यसपछि प्रमथ आदि गणहरूले ती ब्राह्मणलाई यानमा राखेर गीत गाउँदै, बाजा बजाउँदै र आनन्द दिलाउँदै तुरुन्त पवित्र शिवजीको धाममा लगे। अत्यन्त पापी भएता पनि यस लिङ्गको अनुग्रहले गर्दा ती ब्रह्मचाण्डाल शिवजीका सेवक भएर आनन्दसित बसे ॥७७–७९॥

अब तिमी यहाँबाट किरातेश्वर महादेव बस्नुभएको स्थानमा गई त्यस मृगस्थलीमा बग्ने जलधारा भएको तीर्थमा स्नान गर ॥८०॥

जसले मनको इच्छालाई पूर्ण गर्ने, पापनाशक यो गुह्येश्वरीको माहात्म्य सुन्दछ त्यसले आयु, कीर्ति, धन, यश र युद्धमा शत्रुको नाश जस्ता फललाई प्राप्त गर्नेछ। जसले गुह्यनामक भगवान् शङ्करको आराधना गर्दछ त्यसले आफूले सोचेजति सबै फल पाउँछ ॥८१॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा गुह्येश्वरी र गुह्येश्वरको माहात्म्यनामक
एकसय त्रिपन्नौं अध्याय पूरा भयो।

---

४०. चापि च पातकैर्युतः, इति न.सं.पु.पाठः।

४१. गुह्यसंज्ञस्य, इति न.सं.पु.पाठः।

# चतुःपञ्चाशदुत्तरशततमोऽध्यायः

मृगस्थलीमाहात्म्यम्

स्कन्द उवाच

ततोऽकरोद्विरूपाक्षस्तीर्थयात्रां घटोद्भव। सिद्धाश्रमे मृगस्थल्यां नानाद्रुमलतान्विते ॥१॥
आकर्ण्याकर्ण्य तीर्थानां माहात्म्यमुद्भवं तथा। भ्रमन् पृच्छन्[१] मुहुस्तेषु सस्नौ च भक्तितः पुनः ॥२॥
व्याजहार वचः सिद्धः पूर्णिमायां पुनस्ततः। जिज्ञासितो हि तेनार्य ! तीर्थानां विषये पृथक्[२] ॥३॥

सिद्धर्षिरुवाच

एतस्माद् गिरिजायाश्च तत्र पूर्वोत्तरे द्विज। दक्षिणेन तु वाग्वत्या आसीच्च पशुकन्दरम् ॥४॥
तीर्थं ब्रह्मोदयं नाम ब्रह्मणा निर्मितं पुरा। तत्र गत्वा जलं स्पृष्ट्वा स्नानाद्वाऽभ्युक्षणाच्च वा ॥५॥
न पश्येन्मृत्युलोकञ्च सर्वपापैर्विवर्जितः। स्नाहि भक्त्या विरूपाक्ष ! चाऽतश्चोर्ध्वं व्रज ध्रुवम् ॥६॥
अस्मिन्सुन्दरिकातीर्थे स्नात्वा च रूपवान्भवेत्। स्त्रीषु सौभाग्यमाप्नोति पूर्वैनोभिर्विवर्जितः ॥७॥
अतश्चोर्ध्वं विरूपाक्ष ! स्कन्दतीर्थं व्रजाऽधुना। स्तनकुण्डे ह्युमादेव्याः स्नाहि कुण्डे परात्परे ॥८॥
जायमाने पुरा स्कन्दे गौरी तस्मै ददौ स्तनम्[३]। भूमौ यदपतत्क्षीरं कुण्डभूतं ततः परम् ॥९॥
स्तनकुण्डे ह्युमायास्तु यः स्नायात्तत्र मानवः। स्कन्दलोकमवाप्नोति भूत्वा वैश्वानरद्युतिः ॥१०॥
शूलगङ्गाभिधे तीर्थे स्नानाद् दानाच्च भक्तितः[४]। जातिस्मरणमाप्नोति तीर्थानां प्रवरे पुनः ॥११॥

---

## अध्याय – १५४

### गुह्येश्वर शिवलिङ्गको माहात्म्य

कुमार स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! त्यसपछि विरूपाक्ष तीर्थयात्रा गर्दै विभिन्न वृक्ष र लहराहरूले व्याप्त भएको मृगस्थलीको सिद्धाश्रममा गए। उनले तीर्थको माहात्म्य र उत्पत्तिको विषयमा सिद्धर्षि नेमुनिबाट बारम्बार सुनेर तिनीहरूका बारेमा सोध्दै ती ती तीर्थहरूमा भक्तिपूर्वक पटक–पटक स्नान गरे। त्यसपछि पूर्णिमाको दिन मुनिले प्रश्नकर्ता विरूपाक्षसित तीर्थहरूका बारेमा अलग–अलग बयान गर्नुभयो। अर्थात् जुन जुन तीर्थका बारेमा विरूपाक्षले सोधे ती ती तीर्थको अलग अलग महत्त्व बताउनुभयो ॥१–३॥

नेमुनिले भन्नुभयो – हे विरूपाक्ष ! यस तीर्थको पूर्व–उत्तरतिर भगवती गिरिजाको मन्दिर छ। दक्षिणतर्फ वाग्वती बगेकी छन् र त्यहीं पशुपतिको गुफा छ। ब्रह्मोदय नाम गरेको यस तीर्थलाई अघि ब्रह्माजीले बनाउनुभएको थियो। त्यहाँ गएर जल छुँदा, स्नान गर्दा अथवा जलसेचन गर्दा मनुष्यले सम्पूर्ण पापबाट मुक्त भइन्छ र मृत्युलोकमा जानु पर्दैन। हे विरूपाक्ष ! तिमी भक्तिपूर्वक त्यहाँ गएर स्नान गर अनि माथितिर उकालो लाग। यस स्थानमा सुन्दर तीर्थ छ। यस तीर्थमा स्नान गऱ्यो भने मानिस रूपवान् हुनुका साथै पूर्वजन्मका पापबाट मुक्त हुन्छ भने सुन्दरी, सुशीला धर्मपत्नीको पति हुने सौभाग्य प्राप्त गर्दछ ॥४–७॥

हे विरूपाक्ष ! यसपछि तिमी स्कन्दतीर्थमा गएर त्यहाँ रहेको उमादेवीको अत्यन्त उत्तम स्तनकुण्डमा स्नान गर। अघि कार्तिक स्वामी जन्मिएपछि पार्वतीले उहाँलाई दूध खुवाउँदा जब दूधका थोपा भूमिमा खसे त्यसपछि त्यहाँ उत्तम स्तनकुण्ड बन्यो। जुन मानिसले उमाको स्तनकुण्डमा स्नान गर्छ त्यो व्यक्ति अग्निजस्तै तेजस्वी बनेर स्कन्दलोकमा जान्छ। त्यसपछि तिमी शूलगङ्गा नाम गरेको उत्तम तीर्थमा भक्तिपूर्वक स्नान गर तब तिमीलाई पूर्वजन्मका घटनाको स्मरण हुनेछ ॥८–११॥

---

१. पृच्छमानः, इति न.सं.पु.पाठः।
२. प्रश्नमानो हि तेनार्य। तीर्थानाञ्च पृथक् पृथक्, इति न.सं.पु.पाठः।
३. जन्यमाने पुरा स्कन्दे उमा तस्मै ददौ स्तनम्, इति न.सं.पु.पाठः।
४. शूलोद्गङ्गे शुभे तीर्थे स्नायतामत्र भक्तितः, इति न.सं.पु.पाठः।

भ्रमन् प्राप्तो महारुद्रः[५] शूलमारोपयद्यदा। समुद्भूता ततो गङ्गा देवर्षिभिः प्रमाणिता ॥१२॥
शूलगङ्गाभिदे तीर्थे संस्नाति[६] यस्तु मानवः। जातिस्मरणतां प्राप्य ब्रह्मलोकं स गच्छति ॥१३॥
भूयोऽत्र स्नाहि हे सिद्ध[७] ब्रह्माभेदे परात्परे। भृगुकन्दरमूले वै ब्रह्मसायुज्यमाप्नुयाः ॥१४॥
तस्यामगस्त्यवाप्याञ्च संस्नायतां पुनर्द्विज। ऋषिभिः सेवितं नित्यमेतत्तीर्थं सुरैरपि ॥१५॥
अत्रैव च भृशन्तेपे चाऽगस्त्योऽसौ महामुनिः। शरदां वै शतं व्याप्य ब्रह्मणः कलशोद्भवः ॥१६॥
ब्रह्मा विष्णुश्च रुद्रश्च ह्यत्रागत्य ददुर्वरम्। शापायुधं चिरायुष्यं सेव्यत्वञ्च सुरर्षिभिः[८] ॥१७॥
एतस्यां स्नाति यो नद्यामगस्त्यं संस्मरन् हि यः। सप्तजन्मार्जितैः पापैः स मुक्तो नाऽत्र संशयः ॥१८॥
सप्तर्षीणां महातीर्थे चाऽत्रैव स्नाहि भो[९] द्विज। सप्तजन्मोद्भवैः पापैः प्रमुच्यसे न संशयः ॥१९॥
पशुयोन्यां महातीर्थे स्नानेन विधिवद् द्विज। न पुनर्जायते योनौ पशूनां पक्षियोनिषु ॥२०॥
अत्रैव शङ्करः पूर्वं पशुरूपं दधार वै। समुद्भूतं ततः तीर्थं देवैः सिद्धैः प्रसेवितम् ॥२१॥
पशुयोनिञ्च यो भक्त्या सम्पूज्य स्नाति वै मुदा। पशुपाशं समुत्सृज्य कामसिद्धिं समाप्नुयात् ॥२२॥
अत्र गोखुरके तीर्थे स्नायतां कामसिद्धये। तत्रैव स्नानमात्रेण सिद्धदेहो न संशयः ॥२३॥
एतद्गोखुरकं नाम गोवृषपदचिह्नितम्[१०]। समालोक्य पुमान् सिद्धो गोसहस्रफलं लभेत् ॥२४॥
अतः पूर्वदिशि क्षेत्रे योगकुण्डे जलोत्तमे। संस्नाहि देववाप्यां वै योगसिद्धिमवाप्स्यसि ॥२५॥

---

अघि भगवान् शङ्करले घुम्दै आउँदा जब यहाँ शूल गाड्नुभएको थियो, त्यसैबाट यी गङ्गा जन्मिएकी हुन् भन्ने कुरा देवर्षिहरूले सिद्ध गरेका छन्। जुन मानिसले कल्याणदायिनी शूलगङ्गाको तीर्थमा स्नान गर्छ त्यो मानिस पूर्वजन्मको सबै कुरा सम्झिएर ब्रह्मलोक जान्छ। हे सिद्ध ! परब्रह्मसँग अभेद भएको यस भृगुकन्दराको मूलमा स्नान गर। त्यसै स्नानको फलस्वरूप तिमीले ब्रह्मसायुज्यरूप मोक्ष प्राप्त गर्नेछौ ॥१२-१४॥

हे विरूपाक्ष ! त्यसपछि अगस्त्य-तलाउमा स्नान गर। यो तीर्थ देवता तथा ऋषिहरूद्वारा सधैँ सेवित छ। ब्रह्माजीको कलशबाट पैदा भएका महामुनि अगस्त्यले यस ठाउँमा सय वर्षसम्म कठोर तपस्या गरेका थिए। ब्रह्मा, विष्णु र रुद्र यहाँ आएर सराप दिन सक्ने हतियार, धेरैसम्म बाँच्न सक्ने स्थिति र देवताहरूले ढोग्नुपर्ने अवस्थासँग सम्बन्धित वर उनलाई दिए। जसले अगस्त्यलाई सम्झना गरेर यस तलाउमा स्नान गर्छ त्यो व्यक्ति सात जन्मसम्म गरेका पापबाट मुक्त हुन्छ, यसमा सन्देह छैन ॥१५-१८॥

हे विरूपाक्ष ! यो सप्तऋषिहरूको महातीर्थमा स्नान गर। सात जन्मसम्म गरेका पापबाट मुक्त हुनेछौ, यसमा शङ्का छैन। हे विरूपाक्ष ! पशुयोनिसंज्ञक यस महातीर्थमा विधिपूर्वक स्नान गर। यसपछि तिमीले पशु र पक्षीको योनिमा जन्मनुपर्दैन। यसै ठाउँमा अघि भगवान् शङ्करले पशुको रूप लिनुभएको थियो। त्यसै कारणले गर्दा यहाँ तीर्थको उत्पत्ति भयो र देवता तथा सिद्धहरूले यस तीर्थको सेवा गरे। जसले प्रसन्न हुँदै पशुयोनितीर्थमा भक्तिपूर्वक स्नान गर्छ त्यो व्यक्ति पशु र पाशबाट मुक्त भई आफूले चाहेको सिद्धि प्राप्त गर्नेछ ॥१९-२२॥

हे विरूपाक्ष ! तिमी पनि आफ्नो कामना सिद्धिका लागि यो गोखुरतीर्थमा स्नान गर। मानिसलेगाई र वृषभका चरणचिह्नले युक्त यस गोखुरतीर्थमा स्नानमात्रै गर्छ भने पनि त्यो सिद्ध बन्दछ, यसमा शङ्का गर्नुपर्दैन। यो साँढेको खुरले अङ्कित भएको गोखुरनामको तीर्थ हो। यस तीर्थको दर्शन गर्‍यो भने त्यस मानिसले सहस्रगोदान गरेको फल पाउँछ। यसभन्दा पूर्वपट्टिको क्षेत्रमा उत्तम जलले परिपूर्ण भएको योगकुण्ड छ। देवताहरूको त्यस कुण्डमा स्नान गर, तिमीलाई योगसिद्धि प्राप्त हुनेछ ॥२३-२५॥

---

५. भ्राम्यमाणेऽत्र रुद्रे च, इति न.सं.पु.पाठः।
६. स्नायते, इति न.सं.पु.पाठः।
७. स्नायतां सिद्ध, इति न.सं.पु.पाठः।
८. शापायुधं चिरञ्जीवं देवर्षिभिः प्रवन्दनम्, इति न.सं.पु.पाठः।
९. स्नायताम्, इति न.सं.पु.पाठः।
१०. गोवृषपदमीक्षितम्, इति न.सं.पु.पाठः।

योगकुण्डे महातीर्थे स्नाति यश्चैकवत्सरम्। ज्ञानैर्विवर्जितः सोऽपि योगीश्वरो भवेद् ध्रुवम् ॥२६॥
स्वर्णधारानदीमूले यज्ञविलविनिःसृते। संस्नाहि विधिना सिद्ध ! सर्वयज्ञफलं भवेत् ॥२७॥
यज्ञञ्चकार तीर्थेऽस्मिन् पूर्वं[११] दक्षः प्रजापतिः। सर्वैश्च मृण्मयैर्भाण्डैः सिद्धदेवर्षिपूरितैः ॥२८॥
तन्मृण्मयानि पात्राणि प्रोच्चैः सम्प्रेक्ष्य वै तदा। जहसुश्च भृशं देवाः वदन्तः किमहो मिथः[१२] ॥२९॥
पवित्रैर्निर्मलैश्चाऽपि[१३] मृण्मयैर्भाण्डकैः पुनः। लज्जितवान् तदा दक्षो देवानामुपहासतः[१४] ॥३०॥
तदा चावाहयत् स्वर्णरसं दक्षः सुभक्तितः[१५]। धनाध्यक्षं प्रणम्याशु रुद्रमन्त्रेण चेतसा ॥३१॥
उत्पपात जलं पुण्यं यज्ञकुण्डाद्विनिःसृतम्। नदीभूता ततो गङ्गा स्वच्छकल्लोलमालिनी ॥३२॥
व्याजहार वचो दक्षः कर्तृकेभ्यो हि तत्क्षणात्। एतज्जलेन भाण्डानि क्षालयत द्रुतं चराः[१६] ॥३३॥
वचो निशम्य कर्त्तारो दक्षस्य सहसा तदा। प्राक्षालयँश्च तत्तोयैस्तानि भाण्डानि सर्वशः ॥३४॥
ततोऽभवन् हि भाण्डानि मृण्मयानि च तत्क्षणात्। स्वर्णमयानि दिव्यानि यावद्धौतानि तज्जलैः ॥३५॥
ततो देवर्षयस्तानि सम्प्रेक्ष्य मुमुहुर्भृशम्। सन्तुष्टुवुश्च दक्षं तं वदन्तः साधु साध्विति[१७] ॥३६॥
तदादि चाऽद्यतो विप्र ! स्वर्णरसा नदी त्वियम्। स्वर्णधारेति विख्याता देवर्षिभिः प्रसेविता ॥३७॥
एतस्यां यश्च संस्नाति स यज्ञभाग् भवेत्[१८]। धनानि विपुलं भुक्त्वा गच्छति स्वर्गमुत्तमम् ॥३८॥
भूयोऽत्र स्नाति यस्तीर्थे कोषोदके जलोत्तमे। सर्वयज्ञफलं प्राप्य स गच्छेद् ब्रह्मणः पदम् ॥३९॥

---

जसले योगकुण्ड नाम गरेको महातीर्थमा एक वर्षसम्म स्नान गर्छ ज्ञानै नभए पनि निश्चय नै त्यो योगीश्वर हुनेछ। त्यसैले हे विरूपाक्ष ! तिमी पनि यज्ञको कुण्डबाट निस्किएको स्वर्णधारा नदीको मूलमा विधिपूर्वक स्नान गर। त्यसबाट तिमीले सबै यज्ञ सम्पन्न गरेसमानको फल पाउनेछौ। अघि दक्षप्रजापतिले यस ठाउँमा सम्पूर्ण मायका भाँडाहरू जुटाएर यज्ञ गरेका थिए। सिद्ध र देवताहरूले त्यो तीर्थ टम्म भरिएको थियो। त्यसै अवसरमा देवताहरूले ती माटका भाँडाहरूलाई आकाशबाट हेरे र परस्परमा के हो ? के हो ? भनेर खूब हाँसे। माटका भाँडालाई माझेर पवित्र पारिएकै थियो तैपनि देवताहरूले दक्षको धेरै उपहास गरे, त्यसैले गर्दा उनीहरू लज्जित भए ॥२६-३०॥

यसपछि दक्षप्रजापतिले भक्तिपूर्वक रुद्रमन्त्र जप्दै तुरुन्त कुबेरलाई नमस्कार गरेर स्वर्णरसको आवाहन गरे। तुरुन्त यज्ञकुण्डबाट उम्लिएर पवित्र जल माथितर उर्लियो। त्यसैबाट सफा तरङ्गले युक्त भएकी गङ्गानदी बगिन्। त्यसपछि तुरुन्तै दक्षप्रजापतिहरूले काम गर्ने व्यक्तिहरूलाई भने – हे सेवकहरू हो ! तिमीहरू यस जलले यी सबै माटका भाँडा माझ। दक्षप्रजापतिको वचन सुनेर सबै कामदारहरूले तुरुन्त त्यसै पानीले ती भाँडाहरूलाई सबैतिरबाट पखाले। त्यसपछि त्यहाँ जति पनि माटका भाँडा थिए त्यहाँको जलले धोएपछि ती सबै दिव्य सुनका भाँडा बने। देवर्षिहरू त्यो कुरा सुनेर अत्यन्त मोहित भए, दक्षलाई साधु ! साधु ! भन्दै धन्यवाद दिए र दिव्य सन्तोषको अनुभव गरे ॥३१-३६॥

हे विरूपाक्ष ! त्यसै समयदेखि आजसम्म स्वर्णरसा नाम गरेकी नदी बगेकी छन्, स्वर्णधारा नामले प्रसिद्ध यी नदी देवताद्वारा सेवित छिन्। जसले यस नदीमा स्नान गर्छ त्यसले सम्पूर्ण यज्ञ गरेको फल पाउँछ। त्यो व्यक्तिले धेरै धनको उपभोग गरेर उत्तम स्वर्गलोकमा जान्छ। फेरि जसले उत्तम जल भएको यो कोषोदक तीर्थमा स्नान गर्छ त्यो व्यक्ति सम्पूर्ण यज्ञ गरेको फल प्राप्त गरेर ब्रह्मलोकमा जान्छ ॥३७-३९॥

---

११. पूर्वेऽस्मिञ्चात्र, इति न.सं.पु.पाठः।
१२. किमिति प्रवदन् मिथः, इति न.सं.पु.पाठः।
१३. पवित्रत्वं कृतैश्चापि, इति न.सं.पु.पाठः।
१४. हास्यमानोऽमरैर्भृशम्, इति न.सं.पु.पाठः।
१५. तदा चावाहयद्दक्षः स्वर्णरसं सुभक्तितः, इति न.सं.पु.पाठः।
१६. क्षालयध्वं ननु त्विति, इति न.सं.पु.पाठः।
१७. सन्तुष्टुवुश्च दक्षाय साधु साध्विति वै वदन्, इति न.सं.पु.पाठः।
१८. एतस्यां स्नायते यो हि सर्वयज्ञफलं लभेत्, इति न.सं.पु.पाठः।

कोषात्कोषं समाहृत्य रूपञ्च निर्मितं सुरैः। तीर्थं कोषोदकं नाम पुण्यं मुनिजनप्रियम् ॥४०॥
तीर्थे कोषोदके चाऽपि तदग्रे च नदीजले। स्नानमात्रेण संस्नातः प्राप्नुयात् मखजं फलम्[१९] ॥४१॥
स भवेद्धि शुचिर्दक्षः सत्यसन्धो जितेन्द्रियः। विमुक्तः सर्वपापैश्च तत्र स्नानाद्भवेत्सुरः ॥४२॥
अत्र सम्भवतीर्थेषु चानुष्ठेयविधिं शृणु। स्नातकानां विशेषेण तीर्थेषु च पृथक् पृथक् ॥४३॥
ईषे कृष्णे नवम्याञ्च स्नातव्यं गौरीतीर्थके[२०]। कार्त्तिकशुक्लपञ्चम्यां ब्रह्मोदये तथैव च[२१] ॥४४॥
मार्गकृष्णचतुर्दश्यां स्नातव्यं सुन्दरीजले[२२]। शुक्लाष्टम्याञ्च पौषस्य शूलगङ्गातटे तथा[२३] ॥४५॥
माघस्य शुक्लसप्तम्यां ब्रह्मभेदे तथा पुनः। मार्गकृष्णचतुर्दश्यां पशुयोनौ च स्नायताम्[२४] ॥४६॥
मधोः कृष्णत्रयोदश्यां योगकुण्डे च स्नायताम्[२५]। वैशाखस्यासिताष्टम्यां स्तनकुण्डे तथैव च[२६] ॥४७॥
ज्येष्ठस्य कृष्णषष्ठ्याञ्च सूर्यकुण्डे च स्नायताम्[२७]। आषाढे पूर्णिमायां वै स्वर्णधारा जले तथा[२८] ॥४८॥
श्रावणे पूर्णिमायाञ्च कोषोदके तथैव च[२९]। स्नातव्यं कार्त्तिके कृष्णे चतुर्दश्याञ्च गोखुरे ॥४९॥
सङ्क्रान्त्यां वा तथा कृष्णसप्तम्यां भाद्रकस्य च। विधिनाऽगस्त्यतीर्थे वै स्नातव्यं धर्मकाङ्क्षिभिः ॥५०॥
ब्रह्मदीपे महातीर्थे स्नात्वा दीपश्च दीयताम्[३०]। कार्त्तिकस्य चतुर्दश्यां शुक्लायां वा विशेषतः ॥५१॥
गोरक्षनाथसिद्धोऽसौ योगेनात्र समाश्रितः। मत्स्येन्द्रेण समं नित्यञ्चौरङ्गिणा तथापरैः ॥५२॥

देवताहरूले ढुकुटीबाट झिकेको सुन-चाँदी प्रयोग गरेर राम्रोसित बनाएको हुँदा मुनिहरूका लागि पनि यो कोषोदक तीर्थ प्रिय बनेको छ। कोषोदक तीर्थ र यसको अगाडि रहेको नदीमा स्नान मात्रै गऱ्यो भने पनि सबै यज्ञ गरेको फल प्राप्त हुन्छ। जसले त्यस तीर्थमा स्नान गर्छ त्यो व्यक्ति पवित्र, दक्ष, सत्यवादी, जितेन्द्रिय र सम्पूर्ण पापबाट मुक्त हुन्छ, उसले देवस्वरूप नै प्राप्त गर्छ। यहाँ भएका तीर्थहरूमा गर्नुपर्ने विधि र स्नान गर्ने मानिसले ती तीर्थमा स्नान, दानादि गर्नाले प्राप्त हुने विशेष फलका बारेमा बताउँछु, सुन ॥४०-४३॥

आश्विनकृष्ण नवमीका दिन गौरीतीर्थको जलमा स्नान गर्नुपर्छ, कार्तिकशुक्ल पञ्चमीका दिन ब्रह्मोदयको जलमा स्नान गर्नुपर्छ। मार्गकृष्ण चतुर्दशीका दिन सुन्दरीजल तीर्थको जलमा र पौषशुक्ल अष्टमीका दिन शूलगङ्गाको जलमा नुहाउनुपर्छ। माघमासको शुक्लपक्षको सप्तमीतिथिमा ब्रह्मोदयतीर्थको जलमा र मार्गशीर्ष कृष्णपक्षको पशुयोनितीर्थमा स्नान गर्नुपर्दछ। चैत्रकृष्ण त्रयोदशीका दिन योगकुण्डमा स्नान गर्नुपर्छ र वैशाखकृष्ण अष्टमीका दिन स्तनकुण्डमा स्नान गर्नुपर्छ ॥४४-४७॥

ज्येष्ठकृष्ण षष्ठीका दिन ज्ञानी मानिसले सूर्यकुण्डमा स्नान गर्नुपर्छ। आषाढशुक्ल पूर्णिमाको दिन स्वर्णधारानदीको जलमा स्नान गर्नुपर्छ। श्रावणपूर्णिमाका दिन कोषोदकनामक तीर्थमा स्नान गर्नुपर्छ। त्यस्तै कार्तिककृष्ण चतुर्दशीका दिन गोखुरतीर्थमा स्नान गर्नुपर्छ। सङ्क्रान्ति अथवा भाद्रकृष्ण सप्तमीका दिन विधिपूर्वक अगस्त्यतीर्थमा स्नान गर्नुपर्छ। कार्तिकशुक्ल चतुर्दशी अथवा कार्तिककृष्ण चतुर्दशीका दिन मृगस्थलीस्थित ब्रह्मदीपनामक महातीर्थमा स्नान गरेर बत्ती दान गर्नुपर्दछ। मत्स्येन्द्रनाथ र चौरङ्गीनाथ आदि सिद्धहरूलाई साथमा लिएर सिद्ध गोरखनाथले अघि यसै ठाउँमा बसेर योगसाधना गरेका थिए ॥४८-५२॥

१९. तत्रैव स्नानमात्रेण सर्वमेधफलं लभेत्, इति न.सं.पु.पाठः।
२०. गौरीतीर्थे जलाप्लवेत्, इति न.सं.पु.पाठः।
२१. जलाप्लवेत्, इति न.सं.पु.पाठः।
२२. सुन्दरिकाजलाप्लवेत्, इति न.सं.पु.पाठः।
२३. शूलोद्गङ्गाजलाप्लवेत्, इति न.सं.पु.पाठः।
२४. जलाप्लवेत्, इति न.सं.पु.पाठः।
२५. जलाप्लवेत्, इति न.सं.पु.पाठः।
२६. तथाप्लवेत्, इति न.सं.पु.पाठः।
२७. प्रातोऽर्के स्नायते बुधः, इति न.सं.पु.पाठः।
२८. जलाप्लवेत्, इति न.सं.पु.पाठः।
२९. तथापरे, इति न.सं.पु.पाठः।
३०. दीपञ्च दीयते, इति न.सं.पु.पाठः।

तेषां योगश्च संसिद्धस्त्वत्र मृगस्थले द्विज । पशुपतेः प्रसादात्ते योगं प्रापुः समर्हितम्[३१] ॥५३॥
नानासिद्धगणैर्नित्यमत्रागत्य सुभक्तितः । प्रलब्धश्च[३२] महायोगो गोरक्षस्य प्रसादतः ॥५४॥
कार्त्तिकस्य चतुर्दश्यां कृष्णायां वीक्षिता बुधैः । सिद्धाश्रमश्च तत्पादौ निष्कल्मषौ[३३] न संशयः ॥५५॥
गोरक्षं संस्मरन् बुद्ध्या त्रिरात्रं यदि तिष्ठति[३४] । योगीश्वरो भवेदाशु सिद्धदेहो भवेत्सदा ॥५६॥
अत एव गरिष्ठञ्च ह्येतत्क्षेत्रं विरूपदृक् । सिद्धानामाश्रमः शश्वत्पशुपतेर्विहारभूः ॥५७॥
यो दद्यान्मे प्रिये क्षेत्रे विप्रायास्मिँश्च भोजनम् । सर्वयज्ञफलं तस्य मम लोके वसेन्मुदा ॥५८॥
इत्युक्तं खलु देवेभ्यो ज्योतीरूपेण शूलिना । मृगशृङ्गे धृते देवैर्यदाम्बरस्थितेन वै ॥५९॥
मार्गकृष्णचतुर्दश्यां शिवात्मा भक्तितो बुधः । स्नात्वारोहति वाग्वत्यामारभ्य शङ्करस्थलीम् ॥६०॥
मृगस्थलीगिरिं भ्रान्त्वा[३५] ब्रीहिं विक्षिप्य यत्कृतम् । एकब्रीहिप्रदानं तत् सुवर्णरतिकाफलम्[३६] ॥६१॥
पदे पदेऽश्वमेधस्य फलं प्राप्नोति निश्चितम् । भ्रान्तवता[३७] मृगस्थल्यामित्युक्तं शूलिना पुरा ॥६२॥
किरातेशाभिधं लिङ्गं[३८] निशामेकां प्रसेव्यताम् । एतद्दर्शनमात्रेण पापमुक्तिर्भवेद् ध्रुवम्[३९] ॥६३॥

---

हे विरूपाक्ष ! तिनीहरूको योग यसै मृगस्थलीमा सिद्ध भयो । भगवान् पशुपतिको अनुग्रहले गर्दा उनीहरूले उत्तम योग प्राप्त गरेका थिए ॥५३॥ गोरक्षनाथका अनुकम्पाले गर्दा विभिन्न किसिमका सिद्धहरूले यहाँ आएर भक्तिपूर्वक उत्कृष्ट योगहरू प्राप्त गरेका थिए ॥५४॥ कार्तिककृष्ण चतुर्दशीका दिन जुन ज्ञानी मानिसहरूले यो सिद्धाश्रम र सिद्धका पाउको दर्शन गर्छन्, तिनीहरू पापबाट मुक्त हुन्छन्, यसमा शङ्का छैन ॥५५॥ जसले यहाँ गोरखनाथलाई मनमा सम्झिएर तीन रातसम्म बस्छ, त्यो चाँडै योगीश्वर हुन्छ र सधैँको लागि त्यसको शरीर सिद्ध हुन्छ ॥५६॥

हे विरूपाक्ष ! यसै कारणले यो क्षेत्र महत्त्वपूर्ण भएको छ, सिद्धहरूको आश्रम बनेको छ र पशुपतिको पनि क्रीडास्थल बनेको छ ॥५७॥ मेरो यस प्यारो क्षेत्रमा जसले ब्राह्मणलाई भोजन गराउँछ, त्यसलाई सबै यज्ञको फल प्राप्त हुन्छ, त्यो प्रसन्न भएर मेरै लोकमा बस्न पाउँछ ॥५८॥ देवताहरूको वासस्थान भएको मृगस्थलीमा आकाशमा रहेका त्रिशूलधारी शिवले बताउनुभयो । ज्ञानी मानिसले शिवजीलाई भक्तिका साथ मनमा राखेर कृष्णचतुर्दशीका दिन वाग्वतीमा स्नान गरी शङ्करस्थलीदेखि सुरु गरेर पर्वतमा चढ्यो भने मृगस्थली पहाडलाई घुमेर धान छऱ्यो भने एक-एक गेडा बराबर एक रति सुन उसले पाउँछ ॥५९-६०॥

मृगस्थली पर्वतमा घुमेर जुन शतबीज छरिन्छ, त्यो सबै प्रतिबीज एक रति बराबर सुन हुन्छ । अघि शिवजीले मृगस्थलीको परिक्रमा गर्ने क्रममा मृगस्थलीमा भ्रमण गर्ने व्यक्तिले पाइलैपिच्छे अश्वमेध यज्ञ गरेको फल अवश्य पाउँछ भनेर भन्नुभएको थियो । हे विरूपाक्ष ! भगवान् किरातेश्वरको यस लिङ्गलाई एक रात बसेर आराधना गर । यसको दर्शनले मात्रै पनि मानिस विभिन्न किसिमका पापबाट मुक्त हुन्छ ॥६१-६३॥

---

३१. प्राप्नुयुरर्हणम्, इति न.सं.पु.पाठः ।
३२. प्रलब्धस्तैः, इति न.सं.पु.पाठः ।
३३. निष्पापास्ते, इति न.सं.पु.पाठः ।
३४. त्रिरात्रं वसते तत्र तं गोरक्षं स्मरन्धिया, इति न.सं.पु.पाठः ।
३५. भ्राम्य, इति न.सं.पु.पाठः ।
३६. सुवर्णरत्तिकातुल्यं ब्रीहिमेकञ्च तत्फलम्, इति न.सं.पु.पाठः ।
३७. भ्राम्यमाणे, इति न.सं.पु.पाठः ।
३८. एतल्लिङ्गं किरातेशम्, इति न.सं.पु.पाठः ।
३९ नानापापैः प्रमुच्यते, इति न.सं.पु.पाठः ।

ये शृण्वन्ति निखिलमलहरं पूतमध्यायमेतत् सिद्धस्थल्याः खलु पशुपतेः दिव्यक्रीडाचलायाः[४०]।
श्रीमत्पुण्याः श्रवणनिरताः स्नानदानोद्भवानि ते प्राप्नुयुः प्रसभमखिलं तत्फलान्यार्य ! तस्याम् ॥६४॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां मृगस्थलीमाहात्म्यं नाम चतुःपञ्चाशदुत्तरशततमोऽध्यायः ॥१५४॥

---

हे विरूपाक्ष ! सिद्धस्थलीमा भगवान् शङ्करले क्रीडा गर्नुभएको पवित्र प्रसङ्गसँग यो अध्याय जसले सुन्छन्, तिनीहरूले कथाश्रवण, स्नान, दान इत्यादि धर्मकार्यमा संलग्न व्यक्तिहरूले प्राप्त गर्ने सबै फल पाउँछन् ॥६४॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा मृगस्थलीको माहात्म्यनामक
एकसय चौवन्नौं अध्याय पूरा भयो।

---

४०. क्रीडमानाचलायाः, इति न.सं.पु.पाठः।

# पञ्चपञ्चाशदुत्तरशततमोऽध्यायः

## किरातेश्वरशिवलिङ्गमाहात्म्यम्

स्कन्द उवाच

वैशाखस्यासिताष्टम्यामेतल्लिङ्गं पुनर्मुदा। रुद्रसहस्रतीर्थेषु स्नात्वाऽपूपुजदादृतः ॥१॥
किरातेशस्य माहात्म्यं पप्रच्छ नेमुनिं पुनः। अभ्यर्च्य निशि लिङ्गं स भक्त्या प्रणतचेतसा ॥२॥
आकर्ण्य तद्वचोऽगस्त्य ! विनयेनोदितं मुनिः। व्याजहार शुभं वाक्यं तन्माहात्म्यं स्वसेवकम्[1] ॥३॥

सिद्धर्षिरुवाच

आसीत्पुरार्य संवादः कैलाशे शिखरोत्तमे। देवीशङ्करयोः सार्धं ब्रह्मविष्णुगुहैः शुभः ॥४॥
प्रोक्तवाँश्च शिवो देव्यै देवेभ्यश्चाऽञ्जसा वचः। संसृष्टञ्च जगत्पूर्वं द्वन्द्वैः पञ्चात्मकैरिति ॥५॥
व्याजहार सभामध्ये ब्रह्माशु वचनं शुभम्। देव्या मुखं समालोक्य तद्गौरवं प्रकाशयन् ॥६॥

ब्रह्मोवाच।

देवीं विना हरे ! स्कन्द ! चरित्रं शङ्करस्य च। त्रिषु जगत्सु गुप्तस्य वेत्ता कोऽपि न विद्यते ॥७॥
विमुह्य त्वां पुरा विष्णो ! देवी त्वन्नेत्रयोः स्थिता[2]। योगरूपा महामाया सा चेयञ्ज्ञायतामिह ॥८॥
रुद्रोऽपि मोहितोऽजस्रं यया स शक्तिरूपया[3]। क्षुद्राशाश्च वयं किं भो नमस्तुभ्यं नमोऽम्बिके ॥९॥

---

## अध्याय - १५५

### किरातेश्वर शिवलिङ्गको माहात्म्य

कार्तिक स्वामीले भन्नुभयो - विरूपाक्षले श्रद्धापूर्वक वैशाखकृष्ण अष्टमीका दिन रुद्रसहस्र तीर्थमा स्नान गरेर प्रसन्न हुँदै किरातेश्वर लिङ्गको पूजा गरे। त्यसपछि रातमा नम्र भएर भक्तिपूर्वक त्यस लिङ्गको आराधना गरेर विरूपाक्षले नेमुनिसित किरातेश्वर भगवान्‌को माहात्म्य सोधे। विनयपूर्वक विरूपाक्षद्वारा सोधिएको प्रश्न सुनेर नेमुनिले आफ्ना भक्त उनलाई किरातेश्वरको कल्याणमय माहात्म्य सुनाए ॥१-३॥

सिद्धऋषिले भने - पहिलेको समयमा कैलाश पर्वतको श्रेष्ठ शिखरमा देवी, शङ्कर, ब्रह्मा, विष्णु र कार्तिक स्वामीका बीच मङ्गलमय संवाद भएको थियो। देवी र देवताहरूद्वारा सृष्टिप्रपञ्चको उत्पत्तिको विषयलाई लिएर शिवजीका समक्ष प्रश्न गरिएपछि भगवान् शिवले सबैलाई लक्षित गरी पञ्चमहाभूतबाट बनेका नारी र पुरुषहरूको मैथुनधर्मबाट सृष्टिप्रपञ्चको विस्तार भएको कुरा बताउनुभयो। हे विरूपाक्ष ! त्यस सभामा पार्वतीको मुख हेर्दै ब्रह्माजीले सुन्दर वाक्यमा तिनीहरूको माहात्म्य बताउनुभयो ॥४-६॥

ब्रह्माले भन्नुभयो - हे हरि ! हे कार्तिक स्वामी ! शङ्करको चरित्र तीनै लोकमा गुप्त भएको हुँदा उहाँहरूको चरित्र जान्ने देवी पार्वतीमात्र हुनुहुन्छ, अरू कोही पनि छैन। हे विष्णु ! पहिले जसले तपाईंको आँखालाई मुग्ध बनाउनुभयो, ती योगस्वरूपा माया यहाँ नै हुनुहुन्छ भनेर जान्नुहोस्। हे अम्बिके ! जुन शक्तिरूपा हजुरबाट स्वयं महादेव पनि प्रतिक्षण मुग्ध हुनुभएको थियो भने हामीजस्ता क्षुद्रको त के कुरा ! त्यस्ती हजुरलाई नमस्कार छ ॥७-९॥

---

१. स्वभक्तिने, इति न.सं.पु.पाठः। २. नेत्रे चासीत्तवार्ययोः, इति न.सं.पु.पाठः।
३. शक्तिरूपेण वै यया, इति न.सं.पु.पाठः।

सिद्धर्षिरुवाच

भाषमाणे[४] विधावेव प्रोत्फुल्ललोचना तदा। ईषज्जहास शर्वाणी निरीक्ष्य शङ्करराननम् ॥१०॥
ततोऽब्रवीत्तदा शम्भुः स्कन्दाय वचनं द्रुतम्। अन्तः कोपं समाधाय देव्या हास्योदयोद्भवम् ॥११॥
स्कन्द ! रक्षार्य मे स्थानं त्वञ्च[५] बाहुबलैः सदा। इत्युक्त्वाऽन्तर्दधे शम्भुः ताश्च विमोहयन्[६] ध्रुवम् ॥१२॥
वेषं दधार रुद्रोऽसौ किरातरूपमत्र च। पुण्ये श्लेष्मान्तकारण्ये मोहयितुं जगत्प्रभुः[७] ॥१३॥
प्रबद्धजूटिका दीर्घा ललाटान्ते च रज्जुना। वराटकैश्च केशान्ते सङ्ग्रथ्य भूषयन् प्रभुः[८] ॥१४॥
प्रान्ते तदधरोष्ठस्य मसीविभूषितोत्तमम्। चर्चितं हरितालेन[९] वन्यपुष्पस्रजोत्तमम् ॥१५॥
गुञ्जावतंसकर्णान्तं रुद्रकिरातरूपिणम्। मयूरपक्षभूषाढ्यं लतापुष्पाभिशोभितम् ॥१६॥
वल्कलकञ्चुकं शम्भुं सत्काष्ठवलयाङ्गदम्[१०]। द्रुवल्कलपरिधानं[११] गुञ्जास्तवकभूषणम् ॥१७॥
तीक्ष्णं बाणं बकवरगरुत्सक्तभूषासुपुङ्खं
हस्ताब्जेन प्रवरगुणयुक्कार्मुकं धारयन्तम्।
आलोक्यं तं सुशरमपरं शुभ्रदन्तैः सकोपं
कक्षे तूणं जठरपटले कर्त्रिकां धारयन्तम् ॥१८॥

---

नेमुनिले भन्नुभयो – ब्रह्माजीले यति भनेपछि प्रफुल्ल लोचना भगवती पार्वती भगवान् शङ्करको मुख हेरेर मुसुमुसु हाँस्नुभयो। देवी पर्वतीले मेरो उपहास गरेर हाँसेकी हुन् भन्ने बुझेका भगवान् शङ्करले उपहासबाट उत्पन्न रीसलाई भित्रभित्रै शमन गरेर तुरुन्तै कार्तिक स्वामीलाई भन्नुभयो –हे पुत्र कार्तिकेय ! तिमी आफ्नो बाहुबलद्वारा मेरो यस स्थानको रक्षा गर। यति भन्दै सबै देवताहरूलाई मोहमा डुबाउँदै भगवान् शम्भु अन्तर्धान हुनुभयो ॥१०–१२॥

यसरी अन्तर्धान भएपछि संसारका स्वामी भगवान् शङ्करले पवित्र श्लेष्मान्तक वनमा गएर सम्पूर्ण संसारलाई मोहित तुल्याउन किरातको भेष र रूप धारण गर्नुभयो। उहाँले डोरीले निधारको छेउमा लामो जुरो बाँध्नुभएको थियो। कपालका टुप्पामा कौडीहरू राखेर जुरो बाँधी सिँगार्नुभएको थियो। उहाँले तल्लो ओठको छेउमा मसीले सिँगार्नुभएको थियो भने हरितालले गर्दा तेजस्वी भएका जङ्गली फूलको उत्तम माला लगाउनुभएको थियो ॥१३–१५॥

किरातको रूप लिने भगवान् शङ्करले कानसम्म पुग्नेगरी रातिगेडी लगाउनुका साथै मयूरका प्वाँखको गहना धारण गर्नुभएको थियो। लहरा र फूलले गर्दा उहाँ अत्यन्त सुन्दर देखिनुहुन्थ्यो। बोक्राको कोट लगाउनुभएका उहाँले काठको बाला र बाजु लगाउनुभएको थियो। यसरी बोक्रा पहिरन बनाउनुभएका उहाँका गहना रातिगेडीको झुप्पा बनेका थिए। बकुल्लाको प्वाँखले अलङ्कृत पङ्ख भएको तीखो बाणलाई करकमलमा धारण गर्नुभएको थियो। प्वाँख, तीखो बाण, असल ताँदो लगाएको धनुषलाई कमलजस्ता हातमा लिनुभएको थियो। अर्को बाण, ठोक्रो र छुरी काखीमा बेस्सरी कसिने गरी राख्नुभएका उहाँ सेता दाँत देखाएर रिसाएको मुद्रामा रहनुभएको थियो ॥१६–१८॥

---

४. प्रोक्तमाने, इति न.सं.पु.पाठः।
५. स्थाने तव, इति न.सं.पु.पाठः।
६. तस्मै तेषां विमोहितम्, इति न.सं.पु.पाठः।
७. जगत्सर्वं विमोहितुम्, इति न.सं.पु.पाठः।
८. तद्ग्रन्थनैर्विभूषयन्, इति न.सं.पु.पाठः।
९. हरितालेन चर्च्चिक्यम्, इति न.सं.पु.पाठः।
१०. काष्ठेन वलयाङ्गदम्, इति न.सं.पु.पाठः।
११. वल्कलं परिधानञ्च, इति न.सं.पु.पाठः।

ॐ नीवारं तत् भुजयुगगतं भुक्तवन्तं च दोष्णा[१२]
म्लेच्छैरन्यैस्तदनुगमनैः सेव्यमानं किरातैः ।
मुष्ट्या मुष्ट्या ह्यसकृदुचितं सेवकेभ्यो ददानं[१३]
कुक्ष्यालम्बप्रवरवसनं शङ्करं को हि विद्यात्[१४] ॥१९॥
म्लेच्छैः सार्द्धं खलु मृगगणान् मारयन्तञ्च नित्यं[१५]
बाणैरेतद्वनविचरणं म्लेच्छरूपं महेशम्[१६] ।
तेभ्यो भूयो मृगसुपललं भागधेयं ददानं[१७]
भक्तान् धर्तुं विपिनविचरान् तान् पशून् मारयन्तम्[१८] ॥२०॥
अचीक्रिडन्मुदाऽत्रैवं किरातैः सह कानने। सहस्राब्दञ्च दिव्यानां किरातरूपधृक् विभुः ॥२१॥
तस्मिन्काले च सा देवी ज्ञातवती ततः पुनः । चरित्रं खलु रुद्रस्य तद्रूपं धर्त्तुमिच्छती ॥२२॥
ब्रह्महरिकुमारैश्च[१९] गिरौ संवदती च सा। अत्रायय‍ौ हि सन्त्यज्य भवानी सहसा च तान् ॥२३॥
सापि किरातिनीरूपं साक्षाद्दधार चात्र वै। मोहयन्ती महादेवं[२०] जगत्सर्वञ्चराचरम् ॥२४॥
यथा किरातिनीनां सा चेष्टामाधाय चाऽत्र वै। यावत्कलां समन्ताभिरचीक्रिडद्यथासुखम् ॥२५॥
कार्त्तिकस्य चतुर्दश्यां कृष्णायाञ्चाऽत्र शङ्करः । लिङ्गं स्थापितवानेतत्किरातरूपधृक् मुदा ॥२६॥
अगोचरोऽत्र सत्त्वानामवात्सीच्छङ्करो रहः । किरातरूपधृग्रात्रौ चैतल्लिङ्गं प्रपूजयन्[२१] ॥२७॥

---

हातमा नाभो धान लिएर खाँदै गरेका किरातरूपधारी शिवजीका पछिपछि म्लेच्छ र किरातहरू लागेका थिए। उहाँले मुठीले त्यो अन्नको भाग तिनीहरूलाई बाँड्नुभएको थियो। कोखामा झुण्डिएका उत्कृष्ट वस्त्रले गर्दा किरातरूप भगवान्लाई उहाँ नै गवान् शङ्कर हुनुहुन्छ भनेर चिन्ने कोही थिएन। ती म्लेच्छहरूलाई साथमा लिएर छियेछिये हिँड्ने किरातरूपधारी शिवजीले थुप्रै मृगहरूलाई मार्नुभयो र मासुलाई भाग लगाएर तिनीहरूमा बाँडिदिनुभयो। तिनीहरूको पापनाश गर्नकै लागि महादेवले ती भक्त पशुहरूलाई मार्नुभएको थियो ॥१९-२०॥

यसरी किरातको रूप लिने भगवान् महादेवले किरातिनीहरूसँग मिलेर यस जङ्गलमा हजार वर्षसम्म क्रीडा गर्नुभयो। त्यसपछि पार्वतीले पनि महादेवको त्यो चरित्र थाहा पाउनुभयो र उहाँले पनि किरातिनीको रूप धारण गर्ने विचार गर्नुभयो। ब्रह्मा, विष्णु र कार्तिक स्वामीसँग कैलाश पर्वतमा बसेर कुराकानी गरिरहनुभएकी भगवती पार्वती उनीहरूलाई त्यसै ठाउँमा छाडेर अकस्मात् किरातरूप शिव भएका ठाउँमा आउनुभयो। पार्वतीले पनि सम्पूर्ण संसार र स्वयं महादेवलाई नै मोहित तुल्याउन प्रत्यक्ष किरातिनीको रूप धारण गर्नुभयो ॥२१-२४॥

किरातिनीहरूको जस्तो चेष्टा हुन्छ, पार्वतीले पनि त्यस्तै क्रियाकलाप गरेर यस ठाउँमा चारैतिर घुमी सुखपूर्वक क्रीडा गर्नुभयो। कार्तिक कृष्ण चतुर्दशीका दिन किरातरूपधारी भगवान् शङ्करले यस ठाउँमा एउटा लिङ्ग स्थापना गर्नुभयो। प्राणीहरूद्वारा अगोचर भई एकान्तमा वास गर्नुहुने किरातरूपधारी भगवान् शङ्कर रातमा यस लिङ्गको आराधना गर्दै बस्नुहुन्थ्यो ॥२५-२७॥

---

१२. नीवारान्न स खलु बुभुजे मुष्टिनादाय दोष्णा, इति न.सं.पु.पाठः ।
१३. मुष्टिं मुष्टिं ह्यसकृदुचितं दास्यतेभ्यो यथा वै, इति न.सं.पु.पाठः ।
१४. कुक्ष्यालम्बप्रवर वसनादगम्यमानो विदूरात्, इति न.सं.पु.पाठः ।
१५. मृगगणान्वैर्जघानाशु नित्यम्, इति न.सं.पु.पाठः ।
१६. बाणैरेतद्विपिनचरतो म्लेच्छरूपो महेशः, इति न.सं.पु.पाठः ।
१७. तद्ददौ भागधेयम्, इति न.सं.पु.पाठः ।
१८. तान्प्रोद्धर्तुं वृजिनचरतान्संभृताञ्चाहनत्सः, इति न.सं.पु.पाठः ।
१९. ब्रह्मणि च हरौ स्कन्दे गिरौ संवदति सति, इति न.सं.पु.पाठः ।
२०. संमोहयन्महादेवम्, इति न.सं.पु.पाठः ।
२१. प्रसेवयन्, इति न.सं.पु.पाठः ।

तिरस्करीञ्च निःक्षिप्य रुद्रस्याऽगोचराय च[२२]। रुद्रचरित्रमार्या सा ज्ञातवती तदैव हि ॥२८॥
एतल्लिङ्गं मुदा भक्त्या देवी किरातिनी च सा। पूजति स्मोपचारैश्च वन्यपुष्पैर्जलैः सदा ॥२९॥
लिङ्गं सम्पूज्य सा देवी क्रीडन्ती सखीभिः सह। अवसाने ततो लिङ्गं ददर्श पूजितं विभुः ॥३०॥
महारहःस्थले चाऽस्मिन्नेतत्प्रपूजितं हि कैः। अगोचरे च सत्त्वानां मयि संरक्षके सति ॥३१॥
एवञ्चिन्ताकुलो रुद्रो द्रष्टुं तत्पूजकं जनम्[२३]। गूढरूपः पुरस्तस्थौ चाच्छाद्य मायया तनुम् ॥३२॥
विद्यमानेऽपि तस्मिन्सा लिङ्गपूजां व्यधात् पुनः[२४]। दृष्टवान् भगवान् शम्भुर्लिङ्गपूजारताञ्च ताम्[२५] ॥३३॥
एवमेव मिथस्तस्थौ मोहयन्तौ रहःस्थितौ। दिव्यानां वत्सरं यातं सहस्रञ्च विरूपदृक् ॥३४॥
ब्रह्मविष्णुमुखा देवाश्चाऽभूवंश्च सुदुःखिताः। न प्रेक्ष्य शङ्करं देवीं जगत्क्षोभमभूद् भृशम् ॥३५॥

विष्णुरुवाच

सर्वत्र मार्गमाणास्तं वयञ्च क्षीणतां गताः[२६]। पश्यामो नैव[२७] कुत्रापि चार्यारुद्रौ पितामह ॥३६॥
शङ्कितोऽस्मि महादेवः सिद्धारण्ये तपोवने। मृगरूपेण पूर्वेऽस्मिन्नचीक्रिडद्धि यत्र वै ॥३७॥

सिद्धर्षिरुवाच

आकर्ण्य वचनं विष्णोः साधु साध्विति चाऽवदन्। ब्रह्मपुरोगमा देवाः सहर्षमाययुर्द्विज ! ॥३८॥
हा तात शिव हा देवि ![२८] मातर्भवानि निर्जराः। इत्युक्त्वा मार्गयन्ति स्म क्षेत्रे नैपालके शिवम् ॥३९॥

---

किरातिनीको रूप धारण गरेकी भगवती पार्वतीले पनि आफूलाई नचिनाउने गरी पर्दाभित्र रहेर शिवजीको सबै चरित्र थाहा पाउनुभयो। किरातिनीस्वरूपा भगवतीले अत्यन्त प्रसन्न भएर वनमा फुलेका फूल र जलसहितका पूजासामग्रीले यस लिङ्गको नित्य पूजा, आराधना गर्नुभयो। भगवती पार्वती यस लिङ्गको अर्चना गरेर आफ्ना सङ्गिनीहरूका साथ खेल्न जानुहुन्थ्यो। कुनै दिन भगवान् शङ्करले पहिले नै कसैले यस लिङ्गको पूजा गरिसकेको देख्नुभयो। मेरो संरक्षकत्वमा रहेको, कुनै प्राणीले पनि देख्न नसक्ने, एकान्तमा रहेको यस लिङ्गलाई कसले पूजा गऱ्यो ? यस्तो विचार गरेर त्यस लिङ्गको पूजक व्यक्ति पत्ता लगाउन मायाद्वारा आफ्नो शरीरलाई अदृश्य बनाएर भगवान् यसै ठाउँमा बस्नुभयो ॥२८-३२॥

शिवजी एक दिन त्यहाँ बसिरहेको बेलामा पार्वती आएर शिवलिङ्गको पूजा गर्नुभयो। शिवजीले पनि शिवलिङ्गको पूजा गर्ने ती किरातिनीलाई देख्नुभयो। हे विरूपाक्ष ! यसैगरी एकान्तमा बसेर परस्पर मोहित गराउँदै किरातरूपधारी शिवजी र किरातिनी पार्वती दिव्य एक हजार वर्षसम्म त्यहाँ बस्नुभयो। भगवान् शङ्कर र पार्वतीलाई नदेखेर ब्रह्मा, विष्णु आदि गरिएका देवताहरू अत्यन्त दुःखी भए भने संसारमा पनि ठूलो खैलाबैला मच्चियो ॥३३-३५॥

विष्णुले भन्नुभयो - हे ब्रह्माजी ! हामीले संसारभर डुलेर भगवान् शङ्करलाई खोज्दा-खोज्दा थाकिसक्यौँ। पार्वती र भगवान् रुद्रलाई हामीले कहीँ पनि देखेनौँ। मलाई शङ्का लागेको छ कि भगवान् महादेव मृगको रूप लिएर सिद्धहरू बस्ने तपोवनमा क्रीडा गर्न जानुभएको हुन सक्छ किनकि पूर्वकल्पमा पनि उहाँले यसरी नै क्रीडा गर्नुभएको थियो ॥३६-३७॥

नेमुनिले भन्नुभयो - हे विरूपाक्ष ! विष्णुको यस्तो कुरा सुनेपछि उहाँको भनाइ सही हो भन्दै ब्रह्मा आदि देवताहरू सहर्ष यहाँ आए। देवताहरूले हे पिता ! हे शङ्कर ! हे माता भवानी ! भन्दै नेपालको सिद्धारण्यक्षेत्रमा भगवान् शिवजीलाई खोज्न लागे ॥३८-३९॥

---

२२. रुद्रस्यागोचरं यथा, इति न.सं.पु.पाठः।
२३. रुद्रस्तत्पूजकं प्रदर्शितुम्, इति न.सं.पु.पाठः।
२४. लिङ्गं प्रपूजिता सती, इति न.सं.पु.पाठः।
२५. दृष्टवानभवच्छम्भुर्लिङ्गप्रपूजकाञ्च ताम्, इति न.सं.पु.पाठः।
२६ सर्वत्र मार्गमाणाश्च वयं क्षीणा भवामहे, इति न.सं.पु.पाठः।
२७. द्रक्ष्यामहे न, इति न.सं.पु.पाठः।
२८. शङ्करेशार्ये, इति न.सं.पु.पाठः।

शङ्करौ प्रेक्ष्यमाणास्ते ततश्चाऽत्र समागमन्। गुह्याख्यां वन्दयामासुर्भवानीं शिवसंयुताम् ॥४०॥
मातर्देवि नमस्तुभ्यं त्वद्रूपञ्च शिवञ्च नः। प्रदर्शयाधुना देवि खिन्नाःस्मोऽन्वेषणे हरम् ॥४१॥
प्रजेपुस्तुष्टुवुर्भक्त्या गुह्येश्वरीं ततोऽमराः। षण्मासञ्च दिवारात्रौ व्याप्य च त्रिविधैर्मुदा ॥४२॥
ईषे शुक्लनवम्यां सा चाविर्भूता महानिशि। प्रोवाच वचनं तेभ्यो वरं दातुञ्च गह्वरात् ॥४३॥
भो ब्रह्मन्नमरा विष्णो रुद्रं किरातरूपिणम्। अत ऊर्ध्वं मम क्षेत्रे पश्यत माञ्च तादृशीम् ॥४४॥
क्रीडारतं[२९] किरातैस्तै सार्द्धं तत्र सुखं सुराः। किरातिनीं जनैः सार्धं क्रीडन्तीं माञ्च द्रक्ष्यथ[३०] ॥४५॥
इत्युक्त्वान्तर्दधे देवी ज्योतिरूपा च गह्वरे। श्रुत्वा तद्वचनं देवैः सत्यमिति प्रमाणितम् ॥४६॥
तेऽपि प्रणम्य तां सद्यः समारोहन् तपोवनम्। हरं द्रष्टुं यथापूर्वं पङ्क्तिबद्धाः क्रमेण वै ॥४७॥
एतल्लिङ्गान्तिके रुद्रं किरातरूपिणं मुदा। किरातानाञ्च मध्यस्थं ददृशुस्तेऽत्र कानने[३१] ॥४८॥
चर्वयन्तं नीवारान्नं किरातैः सह शङ्करम्। किरातरूपिणं त्र्यक्षमद्राक्षुस्ते धनुर्धरम् ॥४९॥
रक्षणाय च लोकानां व्यक्तीकृत्य किरातिनीम्। तद्रूपेणात्र देवी च देवान्तिके समाययौ[३२] ॥५०॥
उपचारैर्यथा नित्यं किरातरूपिणी पुनः। पश्यन्ती च शिवं साक्षाल्लिङ्गमेतदपूपुजत्[३३] ॥५१॥

---

पार्वती र शङ्करको खोजी गरिरहेका विष्णुसहितका देवताहरू यसै सिद्धक्षेत्रमा आए। उनीहरूले शिवजी र उहाँसँगै रहनुभएकी गुह्यकाली भवानीलाई देखेर सादर प्रणाम गरे र स्तुति गर्न लागे – हे माता ! हे देवी ! हजुरलाई नमस्कार छ। हजुरको रूप धारण गर्ने शिवजीलाई पनि हाम्रो नमस्कार छ। हे देवी ! हामी शिवजीलाई खोज्दा खोज्दा हैरान भइसक्यौं। अब उहाँको दर्शन गराइदिनुहोस्। यसरी भक्तिपूर्वक देवताहरूले दिनरात तीनै किसिमले प्रसन्न हुँदै भगवती गुह्येश्वरीको मन्त्र जपे र स्तुति गरे ॥४०-४२॥

आश्विनशुक्ल नवमीका दिन राति गुफाबाट देवताहरूलाई वर दिनका निमित्त भगवती प्रकट हुनुभयो र उनीहरूलाई भन्नुभयो – हे ब्रह्मा ! हे विष्णु ! हे देवता हो! किरातको रूप लिएर बस्ने भगवान् रुद्र र किरातिनीको रूपमा रहेकी मलाई यसभन्दा माथिल्लो क्षेत्रमा हेर। हे देवता हो ! किरातहरूका साथ निर्जन स्थलमा आनन्दपूर्वक क्रीडा गरिरहनुभएका भगवान् शङ्कर र किरात अनि किरातिनीहरूका साथमा क्रीडा गरिरहेकी मलाई पनि त्यसै स्थानमा देख्नेछौ ॥४३-४५॥

यति भनेर ज्योतिःस्वरूपा भगवती गुफाभित्र पस्नुभयो। उहाँको वचन सुनेर देवताहरूले त्यस कुरालाई सत्य माने। त्यसपछि देवताहरू उहाँलाई नमस्कार गरेर भगवान् शङ्करलाई हेर्नका निमित्त पङ्क्तिबद्ध हुँदै क्रमशः तपोवनमा आरोहण गरे। त्यहाँ पुगेपछि भगवान् शङ्करको लिङ्गको नजिकै किरातहरूको बीचमा प्रसन्न भएर बस्नुभएका किरातरूपधारी भगवान् शङ्करलाई उनीहरूले देखे ॥४६-४८॥

भगवान् शङ्कर किरातहरूका साथ सामाधान चपाइरहनुभएको थियो। देवताहरूले तीनवटा आँखा भएका र धनुष धारण गर्नुभएका किरातस्वरूप भगवान्लाई देखे। संसारको रक्षाका निम्ति किरातिनीको रूप सृजना गरी त्यही रूप लिएर भगवती फेरि त्यहीं देवताहरूका समीपमा आउनुभयो। किरातरूपधारिणी पार्वतीले जसरी सधैं विभिन्न पूजासामग्री लिएर लिङ्गको पूजा गर्नुहुन्थ्यो, त्यसैगरी लिङ्गको पूजा गरेपछि साक्षात् शिवजीको दर्शन पाउनुभयो ॥४९-५१॥

---

२९. क्रीडयन्तम्, इति न.सं.पु.पाठः।
३०. सार्द्धं किरातभिरस्मिन् विरहिते जनैः, इति न.सं.पु.पाठः।
३१. वै वने, इति न.सं.पु.पाठः।
३२. इहाययौ तदा पुनः, इति न.सं.पु.पाठः।
३३. दर्शयन् स्वं शिवं साक्षातेदल्लिङ्गमपूपुजत्, इति न.सं.पु.पाठः।

उत्थाय स्वासनात् रुद्रो मधुरयँश्च मानयन्[३४]। आनीय स्वान्तिके देवीं स्वासनमुपवेशयत् ॥५२॥
ततश्चाऽलिङ्ग्य रुद्रोऽसौ देवीं किरातरूपिणीम्। व्याचष्ट वचनं प्रीत्या तस्यै स्मिताननो हरः ॥५३॥

किरात उवाच

अनेन ब्रह्मणा शैले सत्यमुक्तं पुरा च नः। सर्वज्ञोऽपि ह्यहं देवि मायया ते[३५] विमोहितः ॥५४॥
सर्वेशशब्दरूढोऽपि तव मायाविमोहितः। त्वत्प्रसादादहं वेद्मि[३६] देवि त्वां तमसः पराम् ॥५५॥

सिद्धर्षिरुवाच

समाकर्ण्य वचो देवी रुद्रमुखाच्च्युतं पुनः। व्याजहार वचो रुद्रं कैलासगतिहेतुकम् ॥५६॥

देव्युवाच

भवता नैव वक्तव्यं लोकवन्द्येन शङ्कर। त्वत्प्रसादान्मया लब्धः सुवरो वाञ्छितः पुरा ॥५७॥
बहुकालञ्च नैवात्र स्थातव्यं भवताऽधुना। मयैव हि रहःस्थाने तपोवनोत्तमे प्रभो ॥५८॥

किरात उवाच

नाऽहं समुत्सहे देवि त्यक्तुमेतत्स्थलं पुनः। कञ्चित्कालं मुदा प्रीत्या क्रीडावोऽत्र[३७] यथासुखम् ॥५९॥
वैशाल्यधिपतिर्यावन्नात्रागमिष्यति प्रिये[३८]। क्रीडावस्तावदत्रैव[३९] रूपेणाऽनेन वै सुखम् ॥६०॥
ब्रह्मन् विष्णोऽमराः शक्र यूयं क्रीडत कानने[४०]। किरातवेषमाधाय सहस्राब्दं मया सह ॥६१॥

---

भगवान् शङ्करले पनि आफ्नो आसनबाट उठेर मीठो बोली बोल्दै बडो आदरका साथ पार्वतीलाई नजिकै ल्याएर आफूसँगै रहेको आसनमा राख्नुभयो। त्यसपछि भगवान् शङ्करले किरातरूपिणी पार्वतीलाई प्रेमपूर्वक आलिङ्गन गरेर मुसुक्क हाँस्दै भन्न लाग्नुभयो ॥५२–५३॥

किरातरूपधारी भगवान्ले भन्नुभयो – हे देवी ! ब्रह्माले पहिले कैलाशपर्वतमा हामीलाई साँच्चै भनेका थिए– म सर्वज्ञ छु, तर मायाबाट मोहित हुन्छु। सर्वेश शब्द ममा रूढ छ, तैपनि तिम्रो मायाबाट मैले मोहित हुनुपरेको छ। यो कुरा तिम्रै कृपाले गर्दा मैले थाहा पाएँ। हे देवी ! तिमी अन्धकारभन्दा पनि पर रहेकी ज्योतिःस्वरूपा हौ ॥५४–५५॥

नेमुनिले भन्नुभयो – भगवान् शङ्करको मुखबाट निस्किएको यस्तो वचन सुनेर पार्वतीले पुनः कैलासप्राप्तिको हेतुस्वरूप यी वचन भगवान् शङ्करलाई भन्न लाग्नुभयो ॥५६॥

भगवतीले भन्नुभयो – संसारका वन्दनीय हजुरले यो कुरा भन्न सुहाउँदैन। अघि हजुरकै अनुग्रहबाट मैले इच्छा गरेको यस्तो किसिमको वर पाएकी थिएँ। हे प्रभो ! उत्तम तपोवनको यस एकान्तस्थलमा धेरै समयसम्म हजुरले र मैले पनि बस्नु ठीक हुँदैन ॥५७–५८॥

किरातरूपधारी भगवान्ले भन्नुभयो – हे देवी ! यो ठाउँ छाड्न मलाई पटक्कै मन छैन। केही समयसम्म आनन्दसित यस ठाउँमा हामी फेरि पनि क्रीडा गरौँ। वैशालीका अधिपति लिच्छविराजा जबसम्म यस ठाउँमा आउँदैनन् तबसम्म हामी यसै रूपले यहाँ क्रीडा गरौँ। हे ब्रह्मा ! हे विष्णु ! हे देवता हो ! आजदेखि तपाईंहरू पनि किरातको रूप लिएर हामीसँगै एक हजार वर्षसम्म यसै वनमा क्रीडा गर्नुहोस् ॥५९–६१॥

---

३४. धारयित्वासनादुद्रो मधुरयन् समद्रियन्, इति न.सं.पु.पाठः।
३५. माययेति, इति न.सं.पु.पाठः।
३६. ज्ञातः, इति न.सं.पु.पाठः।
३७. चात्र क्रीडयामः, इति न.सं.पु.पाठः।
३८. जनिष्यति प्रिये, इति न.सं.पु.पाठः।
३९. तावत्क्रीडामहे चात्र, इति न.सं.पु.पाठः।
४०. क्रीडन्तामत्र चाद्यतः, इति न.सं.पु.पाठः।

सिद्धर्षिरुवाच

इत्युक्ते तद्वने रुद्रो ह्यचीक्रिडन्मुदा पुनः। देव्या किरातरूपिण्या[४१] सरित्कुञ्जेषु वै समम् ॥६२॥
प्रणिपत्य ततो रुद्रमचीक्रिडन्मुदाऽमराः। किरातरूपमास्थाय मृगयायां सह स्थिताः[४२] ॥६३॥
सहस्रवत्सरान्ते तद्दिवि यातेऽमरान्वये। कश्चिन्मुक्तः किरातोऽत्र चैतल्लिङ्गे शृणु पुरा ॥६४॥
आसीत्कश्चित्किरातोऽत्र शुकवक्त्रो महाबली। एकदा मृगयां यातः चैतल्लिङ्गं स दृष्टवान् ॥६५॥
गन्धर्वाः खलु सम्पूज्य गीतवाद्यमहोत्सवैः। पूजयित्वा च ते यान्ति नित्यं स्वर्गं ददर्श सः[४३] ॥६६॥
सोऽपि ह्यपूपुजल्लिङ्गं वन्यैः पुष्पोपहारकैः। वाग्वतीशंवरैर्नित्यं गण्डपूर्णोद्धृतैर्मुदा ॥६७॥
मृगमांसं निवेद्यार्य भक्त्या स शिवमब्रवीत्। एतदास्वाद्यता[४४] देव सद्यः सुखमिति प्रभो ॥६८॥
काले काले फलान्यार्य न्यवेदयत्[४५] त्रिशूलिने। स्वादूनि खलु पक्वानि दन्तदष्टानि श्रद्धया[४६] ॥६९॥
फलान्यन्नानि मांसानि निवेदयन् दिने दिने[४७]। परीक्ष्य जिह्वया दन्तैः स्वादूनि यानि यानि च ॥७०॥
एकसंवत्सरं यावद् देवमुपासते शिवम्। ततः सन्तुष्टवान् रुद्रस्तस्य भक्त्या प्रपूजनात् ॥७१॥
कार्त्तिकस्य चतुर्दश्यां कृष्णायां प्रमथा हि तम्। निन्युर्यानेन वै शैवं पूजयित्वा[४८] सविग्रहम् ॥७२॥
स एव प्रमथश्रेष्ठोऽभवन्म्लेच्छश्शुकाननः। रुद्रस्याऽनुचरो नित्यं रुद्रौजसा समायुतः ॥७३॥

---

नेमुनिले भन्नुभयो – यति भनेर फेरि शिवजीले किरातिनी पार्वतीका साथ नदी तथा झाडीहरूमा सहर्ष क्रीडा गर्नुभयो। त्यसपछि देवताहरूले प्रसन्न हुँदै भगवान् शङ्करलाई प्रणाम गरेर किरातको रूप लिएर उहाँको साथमा रही शिकार खेल्दै क्रीडा गरे। यसरी हजार वर्षपछि देवताहरू स्वर्ग गए। त्यसपछि यस लिङ्गको सेवा गरेर कुनै किरातले मुक्ति पएको थियो, त्यो कुरा सुन ॥६२–६४॥

सुगाको जस्तो मुख भएको, अत्यन्त बलियो यहाँ कुनै किरात थियो। एक दिन शिकार खेल्न जाँदा उसले किरातेश्वर लिङ्गको दर्शन पायो। गन्धर्वहरू सधैं त्यहाँ आई गीत गाउँदै, बाजा बजाउँदै विभिन्न उत्सवका साथ यस लिङ्गको पूजा गरेर स्वर्ग जाने गर्थे। त्यो घटना उसले देख्यो र उसले पनि जङ्गलका फूल, पात, मुजुरा र मुखभित्र अटाएसम्मको पानी ल्याएर सधैं प्रेमले त्यस लिङ्गको पूजा गर्न थाल्यो। मृगको मासु भक्तिपूर्वक शिवजीलाई चढाएर त्यस किरातले भन्यो – हे प्रभु ! हे महादेव ! यो सबैको आनन्दपूर्वक स्वाद लिनुहोस् ॥६५–६८॥

हे आर्य ! त्यस किरातले पाकेका मीठा फलफूलहरू ल्याएर पहिले आफूले चाख्यो र मीठो मात्र शिवजीलाई चढाउँथ्यो। ऊ फल, अन्न, मासु दाँतले टोकेर जिब्राले मीठो नमीठो जाँची जुन जुन मीठा छन् ती ती वस्तुमात्र शिवजीलाई चढाउँथ्यो। यसरी एक वर्षसम्म उसले शिवजीको सेवा गर्‍यो। त्यसपछि भक्तिपूर्वक गरेको त्यसको पूजाले शिवजी प्रसन्न हुनुभयो। कार्तिककृष्ण चतुर्दशीका दिन प्रमथगणहरू आएर पूजा गर्दै सशरीर उसलाई यानमा राखेर शिवलोक लगे। त्यही सुगाको जस्तो मुख भएको म्लेच्छ प्रमथगणको नाइके भयो। अहिले त्यो शिवजीको तेजले युक्त भएर सधैं शिवजीको आराधक बनेको छ ॥६९–७३॥

---

४१. किरातरूपिणा देव्या, इति न.सं.पु.पाठः
४२. मृगयां तेन वै समम्, इति न.सं.पु.पाठः
४३. नित्यं सेव्य ययुः स्वर्गमेन मुहुर्ददर्श सः, इति न.सं.पु.पाठः
४४. एतत्प्रपूज्यताम्, इति न.सं.पु.पाठः
४५. निवेदति स्म, इति न.सं.पु.पाठः
४६. दन्तैर्दश्य पुनः पुनः, इति न.सं.पु.पाठः
४७. निवेदति स्म तानि सः, इति न.सं.पु.पाठः
४८. पूज्यमाने, इति न.सं.पु.पाठः

विरूपाक्ष उवाच

अमेध्यैश्च तथोच्छिष्टैर्मन्त्रहीनैश्च पूजनैः । कथञ्च भगवान् तुष्टः पापाचारस्य तस्य च ॥७४॥
धर्मोपवासमन्त्रैश्च स्नानं विनार्य तेन वै । सदेहेन कथं प्राप्तः शिवसादृश्यविग्रहः ॥७५॥

नेमुनिरुवाच

मनोबुद्धिचिदानन्दक्रोधरूपो महाविभुः । तत्तद्रूपेण चाऽन्तःस्थो जीवानां जृम्भतेऽनिशम्[४९] ॥७६॥
सच्चिदानन्दरूपोऽसौ सर्वस्वान्ते विभासते । सगुणः सर्वसाक्षी वै व्योम्नीव राजते रविः ॥७७॥
अलक्ष्यो मूलरूपो यश्चाव्यक्तो[५०] भासते हृदि । स कथं लिप्यते पापैः पद्मपत्रं जलैरिव ॥७८॥
भोक्ता स एव चाऽन्तःस्थो भुङ्क्ते नानाविधं सुखम् । कामरूपेण सर्वेज्यो ह्यमेध्यैर्लिप्यते कथम् ॥७९॥
मनसा कामरूपेण चाऽगृह्णाति च तत्करैः । जन्तोर्मुखेन चाऽन्तःस्थो तद्रूपेण विजृम्भते[५१] ॥८०॥
प्रेरणाय च तस्यार्य ![५२] जिह्वादन्तैः परीक्ष्य च । पदार्थाश्च प्रयच्छन्ति[५३] तदुच्छिष्टं कथं भवेत् ॥८१॥
तज्जिह्वादन्तयोः कार्यं शिवशक्त्यात्मको रसः । ताभ्यां स्पृष्टञ्च यद्द्रव्यं[५४] तदमेध्यं कथं भवेत् ॥८२॥
भक्तिश्रद्धाविहीनो यो दत्ते मूर्खः त्रिशूलिने[५५] । तदमेध्यं तथोच्छिष्टं न गृह्णाति कदापि सः ॥८३॥
एतल्लिङ्गस्य संस्पर्शाद् ज्ञानी भक्तोऽभवत् स च[५६] । जातिदोषेण धीमन् स मेध्यामेध्यं न बुध्यते ॥८४॥

---

विरूपाक्षले भने- हे नेमुनि ! मन्त्रै नपढीकन प्रदान गरिएको त्यस्तो जूठोबाट भगवान् शङ्कर कसरी प्रसन्न हुनुभयो ? धर्म, उपवास, मन्त्र र स्नानविना पनि उसले कसरी यसै शरीरले अर्थात् नमरीकन शिवजीको जस्तो शरीर पायो ? ॥७४-७५॥

नेमुनिले भन्नुभयो- हे विरूपाक्ष ! मन, बुद्धि, चित्त, आनन्द र क्रोधरूप सर्वव्यापक महादेव प्राणीहरूका हृदयमा ती ती रूप लिएर सदा विराजमान हुनुहुन्छ। सर्वगुणसम्पन्न, सर्वसाक्षी भगवान् शङ्कर सबै शरीरभित्र सधैँ सूर्यजस्तै प्रकाशित भएर रहनुभएको छ। उहाँको मूल रूप अलक्ष्य र अव्यक्त छ। उहाँ हृदयको आकाशमा सूर्यजस्तै साक्षी भएर रहनुभएको छ ॥७६-७७॥

मूलरूपमा जो अलक्ष्य छ, जो अव्यक्त भएर प्रकाशित हुन्छ, त्यो व्यक्ति कसरी पापबाट लिप्त हुन्छ ? अर्थात् कमलको पातमा पानीजस्तै त्यो निर्लिप्त भएर रहेको हुन्छ। भित्र रहेर ऊ आफैँ विभिन्न किसिमका सुखहरूको भोग गर्छ। आफ्नो इच्छा अनुसार चल्छ। सबैको पूज्य छ भने त्यो अपवित्रताबाट कसरी लिप्त हुन्छ ? मनको इच्छा अनुसार ऊ आफ्ना हातले भित्र रहेर प्राणीहरूलाई मुख बाउन लगाई हाई गराउँछ। उसैको प्रेरणा अनुसार जिब्रो तथा दाँतले परीक्षण गरेर चढाएका पदार्थहरू कसरी जूठा हुन्छन् र ? जिब्रो र दाँतले शिव र शक्ति भएर रस तुल्याउने काम गर्छन्। ती दुईले छोएको द्रव्य अपवित्र कसरी हुन्छ ? श्रद्धाभक्तिहीन जुन अज्ञानीले शिवजीलाई त्यस्तो जूठो दिन्छ भने त्यो अपवित्र हुन्छ। त्यसलाई भगवान्ले कहिल्यै पनि ग्रहण गर्नुहुन्न। हे बुद्धिमान् विरूपाक्ष ! यस लिङ्गको स्पर्श गरेको हुँदा त्यो म्लेच्छ अत्यन्त ज्ञानी तथा श्रद्धालु भयो। जातिदोषले गर्दा त्यसले कुन पवित्र र कुन अपवित्र छुट्याउन सकेन ॥७८-८४॥

---

४९. जृम्भते जीविनोऽनिशम्, इति न.सं.पु.पाठः ।
५०. यः अव्यक्तः, इति न.सं.पु.पाठः ।
५१. जृम्भमानाय जीविनाम्, इति न.सं.पु.पाठः ।
५२. तत्प्रेरणेन तेनार्य, इति न.सं.पु.पाठः ।
५३. पदार्थानि च यद्दत्तम्, इति न.सं.पु.पाठः ।
५४. ताभ्यां यत्स्पर्शनाद्द्रव्यम्, इति न.सं.पु.पाठः ।
५५. श्रद्धाभक्त्यार्द्रहीनो यः सोऽज्ञो ददाति शूलिने, इति न.सं.पु.पाठः ।
५६. एतल्लिङ्गस्पृशान्म्लेच्छः ज्ञानी श्रद्धी ह्यभूद्भृशम्, इति न.सं.पु.पाठः ।

स्नेहवाञ्छ्रद्धया युक्तो यः कोऽपि पूजति शिवम् । तद् गृह्णाति मुदा रुद्रो भक्तियुक्तश्च किं पुनः ॥८५॥
एतैर्युक्तः किरातोऽसौ मन्त्रहीनोऽपि भक्तितः । अपूपुजत्तथा रुद्रं लब्धवांश्च परं पदम् ॥८६॥
किरातार्जुनयोरत्र[५७] चाऽभूद्युद्धं पुरा द्विज । दत्तो वरश्च रुद्रेण चाऽर्जुनाय महत्तरः ॥८७॥
शैलैः प्रसेवितो नित्यं हिमवत्प्रमुखैर्द्विज । तस्माच्छैलेश्वरः प्रोक्तस्तेषां वाञ्छार्थपूरणात्[५८] ॥८८॥
शृणोति माहात्म्यमिदं नरोत्तमः किरातलङ्गस्य परापरात्मनः ॥
तदर्चनाद्धि प्रभवं फलञ्च हृदीप्सितं वै लभते च भक्तितः ॥८९॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां किरातेश्वरमाहात्म्यं नाम पञ्चपञ्चाशदुत्तरशततमोऽध्यायः ॥१५५॥

---

हे विरूपाक्ष ! भगवान् शङ्कर श्रद्धाले युक्त भएर स्नेहका साथ जो कोहीले पनि उहाँको पूजा गऱ्यो र कुनै वस्तु अर्पण गऱ्यो भने त्यस वस्तुलाई प्रसन्नतापूर्वक ग्रहण गर्नुहुन्छ भने श्रद्धा र भक्तिपूर्वक गरेको पूजाका सम्बन्धमा त के भन्नुपर्छ र ? मन्त्र उच्चारण नगरीकन पनि यसरी यस किरातले भक्तिपूर्वक भगवान् शङ्करको पूजा गऱ्यो र उसले उत्तम पद प्राप्त गऱ्यो ॥८५-८६॥

हे विरूपाक्ष ! किरात र अर्जुनको पनि अघि यसै स्थलमा युद्ध भएको थियो । भगवान् शङ्करले त्यसबेला उनलाई ठूलो वर दिनुभएको थियो । हे विरूपाक्ष ! हिमालय आदि गरिएका पर्वतहरूले सधैँ उहाँको सेवा गरेका र भगवान् शङ्करले तिनीहरूको इच्छा पूर्ण गरिदिनुभएको हुँदा उहाँको नाम शैलेश्वर रह्यो ॥८७-८८॥

हे विरूपाक्ष ! जो मानिसले परमात्मा किरातेश्वर महादेवको लिङ्गको यो माहात्म्य भक्तिपूर्वक सुन्छ, त्यसले पूजा गर्दा पाउन सक्ने सबै फल पाउँछ, इच्छा अनुसार मनमा लागेका फल प्राप्त गर्न सक्छ ॥८९॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा किरातेश्वरको माहात्म्यनामक एकसय पचपन्नौं अध्याय पूरा भयो ।

---

५७. किरातार्जनमत्रैव, इति न.सं.पु.पाठः ।
५८. वाञ्छार्थसम्प्रदात, इति न.सं.पु.पाठः ।

# षट्पञ्चाशदुत्तरशततमोऽध्यायः

किरातेश्वरशिवलिङ्गमाहात्म्यम्

विरूपाक्ष उवाच

नमस्ते मुनिशार्दूल ! सर्ववार्ताविशारद। भूयोऽहं श्रोतुमिच्छामि चैतल्लिङ्गप्रशंसनम् ॥१॥
अभूद्युद्धं तयोः पूर्वं किरातार्जुनयोः कथम्। सोढवान्कथमीशोऽभूदागांसि ह्यर्जुनस्य च ॥२॥

ऋषिरुवाच

धर्मादेशात् पाण्डवेषु वनं यातेषु तेषु च[1]। गूढरूपोऽर्जुनो धन्वी तीर्थयात्रामिहाकरोत् ॥३॥
सिद्धक्षेत्रोद्भवे कुण्डे स्नात्वेह[2] प्राप्तवान्पुनः। वाग्वत्यां सङ्गमे स्नात्वा पशुपतिमपूपुजत् ॥४॥
तत्र यावन्ति लिङ्गानि सम्पूज्यात्राययौ शनैः। युधिष्ठिरमुखाच्छ्रुत्वा चैतल्लिङ्गं प्रपूजितम् ॥५॥
सन्ददर्श किरातान् स धनुर्धरान् समन्ततः। एकग्रावे फलान्यार्य सम्भूय खादतो मुदा ॥६॥
तदार्द्रहृदया म्लेच्छाश्चाजुहुवुश्च पाण्डवम्। भो सखे त्वमिहागच्छ भुङ्क्ष्व चेति तमब्रुवन् ॥७॥
श्रुत्वाशु वचनं तेषां पाण्डवः क्रोधमूर्च्छितः। आधायाऽभ्यन्तरे कोपं तांश्च प्रोवाच सोऽर्जुनः ॥८॥

अर्जुन उवाच

भोक्तुं नेहागतो मूढा युष्मत्सकाशतो ह्यहम्। आराधनाय तल्लिङ्गं जानीत नन्विहागतः ॥९॥
अहो वनौकसाञ्चेष्टा वागीदृशी यतो भवेत्। पात्रापात्रं न जानन्ति मर्कटा इव किङ्कराः ॥१०॥

ऋषिरुवाच

सम्मन्त्र्य सहसा म्लेच्छा रुषाविष्टास्ततः परम्। आकर्ण्य तद्वचो विप्र ! व्याचष्टुर्वचनञ्च ते ॥११॥

---

## अध्याय - १५६

किरातेश्वर शिवलिङ्गका माहात्म्य

विरूपाक्षले भने - सम्पूर्ण विषयका ज्ञाता हे नेमुनि ! हजुरलाई नमस्कार छ। अघि किरातेश्वर भगवान् र अर्जुनको युद्ध कसरी भयो ? किरातेश्वरले अर्जुनका अपराधलाई कसरी सहनुभयो ? म अब किरातेश्वरलिङ्गको माहात्म्य सुन्न चाहन्छु ॥१-२॥

नेमुनिले भन्नुभयो - युधिष्ठिरको सल्लाह अनुसार पाण्डवहरू वनमा गएपछि धनुर्धारी भई गुप्त रूपमा रहेका अर्जुनले यस ठाउँमा तीर्थयात्रा गरेका थिए। यहाँ आएका अर्जुनले सिद्धक्षेत्रबाट उत्पन्न भएको यस वाग्वतीको सङ्गमस्थलमा स्नान गरे र पशुपतिनाथको पूजा गरे। त्यसपछि जति लिङ्ग थिए, ती सबैको पूजा गरेर उनी किरातेश्वरमा आए। युधिष्ठिरको मुखबाट उनले किरातेश्वरको माहात्म्य सुनेका थिए। त्यसैले उनले यस लिङ्गको विशेष पूजा गरे। उनले यहाँ एउटै ढुङ्गामा राखेर परस्पर प्रसन्न हुँदै फल खाइरहेका धनुर्धारी किरातहरूलाई चारैतिर देखे ॥६॥ म्लेच्छहरूले दयाले हृदय पग्लिएका अर्जुनलाई बोलाएर भने - हे साथी ! यहाँ आऊ र फल खाऊ। तिनीहरूको कुरा सुन्नासाथ अर्जुन रीसले आगो भए। भित्रभित्रै रीस लुकाएर अर्जुनले उनीहरूसित भन्न लागे ॥३-८॥

अर्जुनले भने - हे मूर्ख हो ! म तिमीहरूको खानेकुरा खान आएको होइन, म त किरातेश्वर महादेवको लिङ्गको पूजा गर्न यहाँ आएको हुँ भन्ने कुरा बुझ। वनमा बस्ने मानिसहरूको क्रियाकलाप विचित्रको हुँदो रहेछ। बोली पनि यस्तो छ। बाँदरजस्ता यिनीहरू को मान्छे कस्तो भन्ने कुरा जान्दै जान्दैनन् ॥९-१०॥

नेमुनिले भन्नुभयो - अर्जुनको वचन सुनेर ती किरातहरू अत्यन्त रिसाएर परस्पर कुराकानी गरेपछि अर्जुनलाई भन्न लागे ॥११॥

---

१. पाण्डवे च वने याते धर्मपुत्रोपदेशतः, इति न.सं.पु.पाठः।

२. अप्यार्य स्नात्वाहे, इति न.सं.पु.पाठः।

किराता ऊचुः

धृतवस्त्रश्च कृत्वेति शूरोऽहं किञ्च मन्यसे। कृत्वाऽवज्ञाञ्च नो मूढ इति वल्कलवेषिणाम् ॥१२॥
अपि धनुर्धरं त्वाञ्च क्षुद्र ! न गणयामहे। हन्यमाने च काले त्वामेकं को वद रक्षति ? ॥१३॥
यदि नोपेक्षसे प्राणान्[३] नमस्व पादयोर्हि नः। नो चेद्बाणाश्च सोढव्याः क्षुद्र ! त्वद्रक्तलोलुपाः ॥१४॥

ऋषिरुवाच

ततः प्रत्युत्तरं पार्थः किरातेभ्यो ददौ पुनः ॥१५॥
अमर्षैः पूरितस्तीव्रं वह्निरिव घृतेन्धनैः।

अर्जुन उवाच

न बहु वल्गिनः शूरा दर्शयन्ति पराक्रमम्। अद्य प्रदर्श्यतां वो नः किङ्कराः स्वं पराक्रमम्[४] ॥१६॥

ऋषिरुवाच

आकर्ण्य तद्वचो म्लेच्छा मुमूर्च्छुः कोपतो भृशम्। उत्थाय त्वरितं बाणैस्ते जघ्नुः पाण्डवं तदा ॥१७॥
लक्ष्यीकृत्य मुखं पादं पृष्ठमुरःस्थलं भुजम्। चतुर्दिक्षु समावृत्य म्लेच्छा जघ्नुः पुनश्च तम् ॥१८॥
अमर्षी सव्यसाची च सम्मार्जयन् गुणं मुहुः। तद्बाणाहतपीडां स सोढ्वा[५] क्षतमपि द्रुतम् ॥१९॥
जघान त्वरितं म्लेच्छान् पाण्डुपुत्रो भृशं शरैः। चतुर्दिक्षु समुद्दिश्य त्रिभिस्त्रिभिः पृथक् पृथक् ॥२०॥
सन्त्यज्य कार्मुकं बाणान् शिलाशाखाद्रुमैश्च ते। सम्भूय पाण्डवं जघ्नुर्भृशं रुषा समन्ततः ॥२१॥
तस्मादसहमानोऽसौ गाण्डीवं त्वरितं तदा। सस्मार चाक्षयं तूणं नमस्कृत्य दरीश्वरम् ॥२२॥
अत्रागतञ्च गाण्डीवं तूणं तथा क्षयं पुनः। जग्राह त्वरितं पार्थः प्रणम्य प्रजपन् खलु ॥२३॥
ततः कृत्वाशु टङ्कारमयोजयद् गुणे शरान्। पूर्णकर्णोद्धृतैर्बाणैः किरातान् स जघान च ॥२४॥

---

किरातहरूले भने – हे क्षुद्र ! लुगा लगाएको हुनाले शूरो छु भनेर ठानिस् कि कसो ! हे मूर्ख ! रुखको बोक्राको लुगा लगाएका हामीलाई देखेर तैंले आफूलाई ठूलो ठानिस् र हाम्रो अवज्ञा गरिस्। हे क्षुद्र ! धनुर्धारी तैंलाई हामीले पटक्कै गनेका छैनौं। हामीले तैंमाथि प्रहार गर्न थाल्यौं भने त्यसबेला एक्लो तरो रक्षा गर्ने को हुन्छ ? भन्। यदि बाँच्ने इच्छा छ भने हाम्रा गोडामा ढोग्, होइन भने तेरो रगत खान खोज्ने बाणहरूलाई तैंले सहनुपर्छ ॥१२-१४॥

नेमुनिले भन्नुभयो – त्यसपछि घिउ र दाउरामा दन्किएको अग्निजस्तै क्रुद्ध भएका वीर अर्जुनले किरातहरूलाई प्रत्युत्तर दिए ॥१५॥

अर्जुनले भने – हे किङ्कर हो ! वीरहरूले कहिल्यै पनि फूर्ति देखाउँदैनन्, पराक्रम देखाउँछन्। तिमीहरू अब मलाई आफ्नो पराक्रम देखाओ ॥१६॥

नेमुनिले भन्नुभयो – त्यो कुरा सुनेर म्लेच्छहरू रीसले अत्यन्त मूर्च्छित भए। उनीहरूले तुरुन्त उठेर त्यसैबेला अर्जुनलाई बाणले हाने। मुख, गोडा, पिठ्यूँ, छाती र हातलाई ताकेर चारै दिशाबाट घेरी किरातहरूले अर्जुनलाई प्रहार गरे। शत्रुको ललकारलाई सहन नसक्ने अर्जुनले पनि तिनीहरूको बाणबाट भएको पीडा र घाउलाई सहेर अत्यन्त रिसाउँदै धनुषको ताँदोलाई मुसारे। तुरुन्त अर्जुनले किरातहरूलाई चारैतिर फर्किएर तीन-तीन बाणका दरले छुट्टाछुट्टै प्रहार गरे। त्यसपछि उनीहरूले बाण छोडिदिए। रिसाएर ढुङ्गा, मूढा र रुखहरूले चारैतिरबाट अर्जुनलाई खूबसित प्रहार गरे। त्यसबाट असह्य भएर अर्जुनले भगवान् विष्णुलाई नमस्कार गरेर तुरुन्त गाण्डीव धनुको सम्झना गरे। गाण्डीव धनु र अविनाशी बाणको ठोक्रो आएपछि तिनीहरूलाई नाश गर्नका लागि अर्जुनले भगवान्को मन्त्र जप्दै तुरुन्त ग्रहण गरे र कानसम्म ताँदोतानेर अर्जुनले धनुष्टङ्कार गरी किरातहरूलाई प्रहार गरे ॥१७-२४॥

---

३. जीवम्, इति न.सं.पु.पाठः।
४. इदानीं दर्शयध्वं वो नः किङ्कराः पराक्रमम्, इति न.सं.पु.पाठः।
५. सह्यम्, इति न.सं.पु.पाठः।

व्रणाङ्किताः क्षितौ पेतुर्वज्रैरिव हता द्रुमाः। विसेहिरे ततो म्लेच्छास्तद्बाणाघातजान्क्षतान् ॥२५॥
त्यक्त्वा चायोधनं म्लेच्छा दुद्रुवुः शरणं प्रभोः। किरातरूपिणः शम्भो रक्ष रक्ष न्यवेदयन्[६] ॥२६॥
जघान च द्रुतं पार्थः शरैरानतपर्वभिः। रुद्रं प्रसेव्यमानं तैस्तद्रूपं नैव बुद्धवान्[७] ॥२७॥
अभिससार चाऽत्रापि कृत्वा टङ्कारमीश्वरः। पिनाकञ्च समादाय समादधे शरं गुणे ॥२८॥
ववर्ष शरवृष्टिञ्च पाण्डवस्योपरि द्रुतम्। पिनाकप्रेरितां रुद्रो यथासारैर्जगत्क्षये ॥२९॥
व्रणाङ्कितोऽपि तद्बाणैरर्जुनो वीरविक्रमः। शरवृष्टिं ववर्षाजौ रुद्रस्योपरि सन्ततम् ॥३०॥
युयुधतुर्मिथः क्रोधाद्धन्तुं जिघृक्षया मुहुः। प्रहरन्तौ मिथस्तौ हि सिंहौ मत्तौ गजाविव ॥३१॥
न सेहे चाऽर्जुनो विप्र ! रुद्रबाणाहतिव्यथाम्। सन्त्यज्यायोधनं सद्यश्चैतल्लिङ्गमपूपुजत् ॥३२॥
वन्यैः पुष्पैर्जलैर्भक्त्या पुपूज[८] चन्दनैर्मुहुः। एवं स्तुवन् परिक्रम्य युयोध तेन वै सह ॥३३॥
भूयो भूयो महद्युद्धञ्चक्रतुश्च भयङ्करम्। लक्ष्यीकृत्य मिथोऽङ्गानि[९] चिक्षिपतुः शरान् मुहुः ॥३४॥
रुद्रशरव्रणं पार्थो न सोढ्वा शिवमब्रवीत्। युद्धे परिश्रमोऽत्यन्तं विश्रान्तिः क्रियतामिति[१०] ॥३५॥

अर्जुन उवाच

भो किरात ! परिश्रम्य शृणु मम वचः क्षणम्। हितोपदेशमार्याणां श्रोतव्यमिति वै श्रुतिः ॥३६॥
अपनीय श्रमं श्रान्त्वा[११] योद्धव्यञ्च परैः सह। इत्युक्तं मे पुरा भ्रात्रा युधिष्ठिरेण किङ्कर ॥३७॥
अद्य व्यतीतः कालो मे हरार्चनस्य किङ्कर। यावन्न भविता युद्धं पूजयिष्यामि शङ्करम्[१२] ॥३८॥

---

वज्रले हानिएका रुखजस्तै भएर बाणको आघातले गर्दा घाइते भएका म्लेच्छहरू बाणको आघात सहन नसकेर भूमिमा पछारिए। त्यसपछि किरातहरू युद्ध छोडेर हे शम्भो ! हामीलाई रक्षा गर्नुहोस् भन्दै किरातरूपधारी शिवजीको शरणमा गए। अर्जुनले शिवजीको सेवा गर्न लागेका किरातहरूलाई तिनीहरूको स्वरूप नबुझीकन खूबसित तानेर तुरुन्त बाण प्रहार गरे। यता शिवजीले पनि पिनाक धनुषको सम्झना गर्नुभयो। पिनाक आएपछि त्यसलाई समातेर टङ्कार गर्दै त्यसलाई ताँदोमा चढाउनुभयो ॥२५–२८॥

भगवान् शङ्करले प्रलयकालमा पानीका धारा बर्सिए जस्तै गरी अर्जुनमाथि बाणहरूको वर्षा गर्नुभयो। घायल भए तापनि पराक्रमी वीर अर्जुनले रुद्रमाथि बाणहरूको वर्षा गरिरहे। किरातेश्वर महादेव र अर्जुन क्रुद्ध भएर जित्ने इच्छाले मत्त भएका दुई हात्ती अथवा दुई सिंहजस्तै गरी परस्पर प्रहार गर्न थाले। अर्जुनले शिवजीको बाणको आघातबाट भएको पीडालाई सहन गर्न सकेनन्। त्यसपछि उनले युद्ध छोडेर तुरुन्तै किरातेश्वर शिवलिङ्गको पूजा गरे। उनले वनका फूल, पानी र चन्दन ल्याई भक्तिपूर्वक परिक्रमा र स्तुति गर्दै शिवजीको पूजा गरे र त्यसपछि उनी किरातेश्वरसँग लड्न थाले। उनीहरूले बारम्बार डरलाग्दो ठूलो युद्ध गरे, मर्मयुक्त अङ्गलाई परस्पर ताकाताक गरेर बारम्बार बाणहरू छोडे। शिवजीको बाणबाट भएको घाउलाई सहन नसकेर अर्जुनले शिवजीलाई म तिम्रो सेनादेखि डराएको त होइन, युद्ध गर्दा गर्दा मलाई ज्यादै थकाइ लाग्यो, तसर्थ केही बेर युद्धविराम गरौं भने ॥२९–३५॥

अर्जुनले अगाडि भने – हे किरात ! ध्यान दिएर एकछिन मेरो कुरा सुन, किनभने महात्माहरूको हित उपदेश सुन्नुपर्छ भनेर वेदले भनेको छ। हे किरात ! मेरा दाजु युधिष्ठिरले मलाई थकाइ मारी मारी शत्रुसित लड्नुपर्छ भनेर बताउनुभएको थियो। आज मेरो शिवपूजाको समय बित्यो। जबसम्म युद्धको समय हुँदैन त्यस समयसम्म म शिवजीको पूजा गर्छु ॥३६–३८॥

---

६. रक्षेति नो वदन्, इति न.सं.पु.पाठः।
७. समजानतः, इति न.सं.पु.पाठः।
८. आनर्च, इति न.सं.पु.पाठः।
९. अवयव मिथो लक्ष्य, इति न.सं.पु.पाठः।
१०. तद्बले ह्यभयावहः, इति न.सं.पु.पाठः।
११. श्राम्य, इति न.सं.पु.पाठः।
१२. पूजिष्यामि च शङ्करम्, इति न.सं.पु.पाठः।

ऋषिरुवाच

आकर्ण्य तद्वचो रुद्रः किराताङ्गी स्मिताननः। स्वस्मिन् भक्तिञ्च[13] सम्प्रेक्ष्य तत्पराक्रमहर्षितः ॥३९॥
उवाच वचनं शम्भुस्तस्मै दातुञ्च[14] काङ्क्षितम्। दन्तानां किरणैः शुभ्रैर्विद्योतयन् दिशो दश ॥४०॥

किरात उवाच

पूजयस्व हरं पार्थ यथेप्सितं त्वमर्हणैः। मुञ्च मत्तो भयं किञ्चित् कुरु पूजां हृदीप्सिताम् ॥४१॥
यथासुखञ्च सम्पूज्य लिङ्गाङ्गं जगदीश्वरम्। ततः प्रयुध्यतां पार्थ वरं लब्ध्वा[15] मया सह ॥४२॥

ऋषिरुवाच

आकर्ण्य तद्वचो विप्र ! महालिङ्गमपूपुजत्। सन्त्यज्य कार्मुकं बाणं जलैः पुष्पोपहारकैः ॥४३॥
स्तुत्वा प्रणम्य लिङ्गं स परित्यज्य पुनः पुनः। आदाय कार्मुकं बाणं युयोध तेन वै समम् ॥४४॥
अपश्यदर्जुनो रुद्रं लिङ्गं यैर्यैः प्रपूजितम्। तैः पुष्पचन्दनैर्युक्तं प्राहरत् तन्निजैः शरैः[16] ॥४५॥
चर्चितं चन्दनैस्तैश्च कुसुमैस्तैर्विभूषितम्[17]। तज्जलैः सिक्तदेहन्तं प्रहरन्तं स्मिताननम् ॥४६॥
किङ्किमिति ततः कृत्वा प्रेक्ष्य कुसुमचन्दनम्। ईषत्प्रहसितः पार्थः दृष्ट्वा तञ्च[18] स्मिताननम् ॥४७॥
पुनः प्रहर्तुं तं[19] पार्थ उद्यतोऽपि युधि द्विज। हृदि शङ्कां निधायेशं नैव प्रहृतवान्[20] विभुम् ॥४८॥
हरोऽपि दर्शयन्पार्थं स्वविग्रहं पिनाकिनम्। उद्धूय सहसा मायां तच्छक्त्या च[21] प्रहर्षितः ॥४९॥
प्रेक्ष्य पिनाकिनं पार्थस्तुष्टाव तं मुहुर्मुहुः। सन्त्यज्य कार्मुकं बाणं प्रणम्य दण्डवद् भुवि ॥५०॥

---

नेमुनिले भन्नुभयो – अर्जुनको भनाइ सुनेपछि किरातरूपधारी भगवान् शङ्कर आफूमाथि उनको भक्ति र पराक्रम देखेर खुसी हुँदै मुसुक्क हाँस्नुभयो। अनि भगवान् शम्भुले दाँतका सुन्दर किरणद्वारा दशै दिशालाई उज्यालो पार्दै अर्जुनलाई वर दिनका लागि भन्नुभयो ॥३९-४०॥

किरातेश्वरले भन्नुभयो– हे अर्जुन ! पूजा गर्दा मलाई बाण हान्छ कि भन्ने डर नराखीकन आफूखुसी पूजासामग्री जम्मा गरी आनन्दसित लिङ्गस्वरूप भगवान्को पूजा गर। हे पार्थ ! भगवान्बाट चाहेको वर पाएपछि मसित युद्ध गरौला ॥४१-४२॥

नेमुनिले भन्नुभयो – किरातको त्यो भनाइ सुनेर अर्जुनले धनु र बाण भुईंमा राखे। पानी, फूल आदि पूजासामग्री लिएर उनले किरातेश्वरलिङ्गको पूजा गरे। यसरी लिङ्गको स्तुति र प्रणाम गरेर बारम्बार फ्याँकिएको त्यो धनुष र बाणलाई फेरि समाते, किराततसँग उनले युद्ध गरे। अर्जुनले लिङ्गमा जुन जुन फूल, चन्दन आदि चढाएका थिए, आफूले प्रहार गर्न लागेका किराततलाई तिनै फूल र चन्दनले युक्त भएको देखे ॥४५॥

अर्जुनले चढाएको चन्दन दलेर, फूलले सिङ्गारिएर उनैले चढाएका जलमा निथ्रुक्क भिजेर मुसुमुसु हाँस्दै बाणप्रहार गरिरहेका शिवजीलाई अर्जुनले देखे। त्यसपछि कसो हो ए ! भनेर उनले बुझ्न खोजे। आफूले चढाएको फूल र चन्दनलाई चिनेर लडाईंमा बाण हान्न तयार हुँदाहुँदै पनि उनले किराततलाई बाण प्रहार गर्न सकेनन्। यी किरात शिव नै हुन् भनेर सशङ्कित हुँदै उनले शिवजीमाथि बाणप्रहार गरेनन्। अर्जुनको पराक्रम देखेर प्रसन्न हुनुभएका भगवान् शङ्करले पनि पिनाकधारी आफ्नो शरीर अर्जुनलाई देखाइदिनुभयो र माया हट्याइदिनुभयो। अर्जुनले पिनाकधारी भगवान् शङ्करलाई देखेर बाण परित्याग गरे। पृथ्वीमा लम्पसार परेर दण्डवत् प्रणाम गरे, बारम्बार शिवजीको स्तुति गरे ॥४९-५०॥

---

१३. तद्भक्तिं स्वे च, इति न.सं.पु.पाठः।
१४. दानाय, इति न.सं.पु.पाठः।
१५. लब्धवरः, इति न.सं.पु.पाठः।
१६. तत्पुष्पचन्दनोपेतं प्रहारयत्तमाशुगैः, इति न.सं.पु.पाठः।
१७. तच्चन्दनैश्च सञ्चर्च्य तत्कुसुमैश्च भूषयन्, इति न.सं.पु.पाठः।
१८. पार्थस्तादृशाङ्गम्, इति न.सं.पु.पाठः।
१९. प्रहारितुञ्च तम्, इति न.सं.पु.पाठः।
२०. न प्रहारितवान्, इति न.सं.पु.पाठः।
२१. तद्बलैश्च, इति न.सं.पु.पाठः।

अर्जुन उवाच

ॐ नमो हराय रुद्राय सात्वतां पतये नमः । त्र्यम्बकाय च रुद्राय प्रेतानां पतये नमः ॥५१॥
किरातदेहिनेऽजाय किरातवेषिणे नमः । किरातेशाय भर्गाय म्लेच्छरूपाय वै नमः ॥५२॥
व्यक्ताव्यक्तरूपाय भक्तभक्ताय ते नमः[२२] । पिनाकिने महेशाय जगद्रक्षाविधायिने ॥५३॥
वरदाय वरेशाय प्रवरवरदायिने । पराय परमेशाय परापराय वै नमः ॥५४॥
विमोहितोऽहं तव देव मायया कृतं प्रयुद्धं भवता समं विभो ।
सम्प्राहरं वै[२३] त्वयि चाशुगैर्भृशं क्षमस्व देवेश ममाऽपराधकम् ॥५५॥

किरातेश्वर उवाच

म्लेच्छोऽभूस्त्वं पुरा जन्मकिरातोऽसि ततो नरः । वाग्वत्यां श्रद्धया स्नानादर्जुनोऽसि न संशयः[२४] ॥५६॥
तुष्टोऽहञ्च समालोक्य चार्जुन ते पराक्रमम् । स्तुतिभिश्च विशेषेण त्रिविधाभिश्च भक्तिभिः[२५] ॥५७॥
वरं वरय मत्तस्त्वं पाण्डुनन्दन ! साम्प्रतम् । विद्यते वीर यत्स्वान्ते तत्सर्वं ते ददाम्यहम् ॥५८॥

अर्जुन उवाच

सर्वज्ञ ! सर्ववन्द्येश ! जानासि मम वेदनाम् । सर्वस्वान्ते स्थितो देवः कृत्याकृत्येषु दर्शकः ॥५९॥
दुर्योधनेन नो देव ! सर्वं राज्यं हृतं वयम् । प्रेरिता वनवासाय गुप्तरूपेण संस्थिताः[२६] ॥६०॥
राज्यं याचे निजं देव ! त्वत्तोऽहं क्षत्रनन्दनः[२७] । कौरवेषु जयञ्चाऽपि वरमेनं महेश्वर ![२८] ॥६१॥

---

अर्जुनले भने – संसारका संहारकर्ता रुद्रलाई नमस्कार छ । सम्पूर्ण प्राणीका स्वामीलाई नमस्कार छ । तीन आँखा भएका प्रेतका मालिक शङ्करलाई नमस्कार छ । किरातको शरीर धारण गर्ने अजन्मा र किरातको भेषधारीलाई नमस्कार छ । किरातका स्वामी तेजस्वरूप म्लेच्छलाई नमस्कार छ । भक्तहरूका निमित्त कल्याणकारक व्यक्त तथा अव्यक्त स्वरूप भएका भगवान्‌लाई नमस्कार छ । सम्पूर्ण जगत्‌को रक्षा गर्ने पिनाकधनुर्धारी महेश्वरलाई नमस्कार छ । उत्तम वर दिने वरका अधिपति वरदाता परम परमेश्वर परापरलाई नमस्कार छ । हे भगवन् ! हजुरको मायाले मैले मोहित भएर हजुरसँग युद्ध गरेँ । हजुरमाथि खूबसित बाणहरू प्रहार गरेँ । हे ईश्वर ! मेरो अपराधलाई क्षमा गरिदिनुहोस् ॥५१-५५॥

किरातरूपधारी भगवान् शङ्करले भन्नुभयो – अघिल्लो जन्ममा तिमी पनि म्लेच्छ किरात भएका थियौ । यसै वाग्वतीमा स्नान गरेको हुनाले यस जन्ममा अर्जुन भएका हौ, यसमा शङ्का छैन । हे अर्जुन ! तिम्रो पराक्रम देखेर विशेष गरी स्तुति, भक्ति र चालचलनबाट म प्रसन्न भएँ । हे पाण्डुपुत्र ! अब तिमी मसित वर माग । तिम्रो मनमा जे लागेको छ, त्यो सबै म दिन्छु ॥५६-५८॥

अर्जुनले भने – हे सर्वज्ञ ! हे सबैका वन्दनीय ! हजुर कृत्य र अकृत्य सबै कुरा थाहा पाउनुहुन्छ । मेरो हृदयमा के कस्तो वेदना छ, हजुर जान्नुहुन्छ । दुर्योधनले हाम्रो राज्य सबै लुट्यो । उसको अपमानले गर्दा हामी वनमा गुप्तवास गरिरहेका छौँ । हे महादेव ! म क्षत्रिय हुँ । त्यसैले म युद्धमा कौरवलाई जितेर आफ्नो राज्य लिन चाहन्छु । हे शङ्कर ! यही वर दिनुहोस् ॥५९-६१॥

---

२२. भव्याय भक्तिनां नमः, इति न.सं.पु.पाठः ।
२३. प्रहारितं मे, इति न.सं.पु.पाठः ।
२४. वाग्वत्यां स्नानतोऽत्रेह चार्जुनोऽसि न संशयः, इति न.सं.पु.पाठः ।
२५. तव भक्तिभिरीरितैः, इति न.सं.पु.पाठः ।
२६. चापमानप्रचोदिताः, इति न.सं.पु.पाठः ।
२७. क्षत्रियोऽहं महादेव ! याचे राज्यं स्वकं तव, इति न.सं.पु.पाठः ।
२८. कौरवान् युधि निर्जित्य चैतद्वञ्च शङ्कर, इति न.सं.पु.पाठः ।

किरातेश्वर उवाच

किञ्चित्कालान्तरे पार्थ चैवमेव भविष्यति। यश्चाऽपि हृदि ते कामः स च पूर्णो भविष्यति[२९] ॥६२॥

स्नाहि क्षत्रियतीर्थे त्वं लब्ध्वा जयं ततोऽर्जुन। निवृत्ते भारते शेषे मम लोकं गमिष्यसि ॥६३॥

ऋषिरुवाच

इत्युक्त्वा चाऽर्जुनायेशश्चैतल्लिङ्गे व्यलीयत। द्योतयंश्च दिशो भाभिरस्ताचलमिवांशुमान् ॥६४॥

अर्जुनोऽपि प्रणम्येशमेतल्लिङ्गं परिक्रमन्। सस्नौ क्षत्रियतीर्थेऽसौ श्रद्धालुः खलु भक्तितः ॥६५॥

कार्त्तिक्यां[३०] पूर्णिमायां स वरं लेभे दशाहनि। तत्र स्नात्वाऽगमच्छीघ्रं भ्रातरो यत्र वै स्थिताः ॥६६॥

नित्यं पूजितवानत्र चैतल्लिङ्गं हिमालयः। तस्माच्छैलेश्वरं ख्यातं तेन प्रसेवनाद् द्विज ॥६७॥

शैलेश्वरं तु यः स्नानैः भक्तिपूर्वमुपासते[३१]। मत्पार्षदो भवेत्सद्यो विचरेत्स सुरैः सह ॥६८॥

शैलेश्वरं परं गुह्यं गतिः शैलेश्वरो परा। शैलेश्वरसमं[३२] क्षेत्रं न किञ्चिद् भुवि विद्यते ॥६९॥

उपासको भवेद्यस्तु दक्षिणे च महात्मनः। शैलेश्वरस्य मर्त्यो यः स गच्छेत्परमां गतिम् ॥७०॥

भृगुप्रपतनं कृत्वा कामक्रोधविवर्जितः। विमानेन दिवं यायादप्सरोगणसेवितः ॥७१॥

विविधान्यत्र तीर्थानि सन्ति पुण्यानि देवताः। येषां तोयैर्नरः स्पृष्टः सर्वपापैः प्रमुच्यते ॥७२॥

ब्रह्महा गुरुहा गोघ्नः स्पृष्टोऽपि सर्वपातकैः। क्षेत्रमेतदनुप्राप्य निर्मलो जायते नरः ॥७३॥

इत्युक्तञ्च पुरेशेन देवेभ्यो ज्योतीरूपिणा। इत्येतत्कथितं विप्र ! किरातेशप्रशंसनम् ॥७४॥

---

हे अर्जुन ! केही समयपछि तिमीले सोचेजस्तै हुनेछ। मेरो अनुग्रहले गर्दा तिम्रो हृदयमा जे छ, त्यो कामना पूर्ण हुनेछ, यसमा शङ्का छैन। हे अर्जुन ! तिमीले यस क्षत्रियतीर्थमा स्नान गर। तिमीले महाभारतको युद्धमा विजय पाउनेछौ। त्यो युद्ध समाप्त भएपछि अन्त्यमा तिमी मेरो धाममा बस्न पाउनेछौ ॥६२-६३॥

नेमुनिले भन्नुभयो - अर्जुनलाई यति कुरा भनेर सम्पूर्ण दिशालाई कान्तिद्वारा उज्यालो पार्दै सूर्य अस्ताचलमा डुबेझैँ गरी भगवान् शङ्कर त्यसै लिङ्गमा विलीन हुनुभयो । अर्जुनले पनि भगवान् शङ्करलाई नमस्कार गरे, किरातेश्वरलिङ्गको परिक्रमा गरे, श्रद्धा र भक्तिका साथ क्षत्रियतीर्थमा गएर उनले स्नान गरे। शङ्करबाट वर पाएका अर्जुन कार्तिकपूर्णिमाको दिन स्नान गरेर दशौं दिनभित्र जहाँ भाइहरू बसेका थिए, त्यसै ठाउँमा पुगे ॥६४-६६॥

यस लिङ्गलाई हिमालयले सधैँ पूजा गरेका थिए। हे विरूपाक्ष ! उनले पूजा गरेको हुँदा यसको नाम शैलेश्वर रहेको हो। जसले भक्तिपूर्वक शैलेश्वर भगवान्को पूजा गर्छ त्यो तुरुन्त मेरो पार्षद भएर देवताहरूका साथ विचरण गर्दछ। शैलेश्वर अत्यन्त गुप्त छ। शैलेश्वर सबभन्दा ठूलो गति हो, शैलेश्वर सबैभन्दा ठूलो क्षेत्र हो। पृथ्वीमा त्यस्तो अरू केही छैन। महत्त्वशाली यस शैलेश्वरको दक्षिणपट्टि गएर जसले उपवास बस्छ त्यसले परमगति पाउँछ ॥६७-७०॥

काम-क्रोधबाट मुक्त भएर शैलेश्वरमा गई हामफाल्यो भने दिव्य विमानमा चढी अप्सराहरूद्वारा सुशोभित हुँदै त्यो व्यक्ति स्वर्ग जान्छ। यहाँ अनेक पवित्र तीर्थहरू छन्। अनेक देवताहरूको वास छ। यहाँका तीर्थको जल छुनाले मात्र पनि सबै पापबाट मानिस मुक्त हुन्छ। ब्रह्महत्या गर्ने, गुरुहत्या गर्ने, गाई मार्ने र सम्पूर्ण पापले युक्त भएको मानिस पनि यस तीर्थमा आउँछ भने निर्मल हुन्छ अर्थात् पापबाट मुक्त हुन्छ। पहिले ज्योतिस्वरूप भगवान्ले देवताहरूलाई यही कुरा बताउनुभएको थियो। हे ब्राह्मण विरूपाक्ष ! मैले पनि तिमीलाई त्यही किरातेश्वरको माहात्म्य बताएँ ॥७१-७४॥

---

२९. हृदि यदस्ति ते कामं मत्प्रसादान्न संशयः, इति न.सं.पु.पाठः।
३०. कार्त्तिकी.., इति न.सं.पु.पाठः।
३१. भक्तितः समुपासते, इति न.सं.पु.पाठः।
३२. शैलेश्वरं परम्, इति न.सं.पु.पाठः।

भूयो गच्छ विरूपाक्ष ! भस्मेश्वरो हि यत्र च। भस्मगङ्गामहाकुण्डं यत्रास्ते द्विज निर्मलम् ॥७५॥

श्रृण्वन्तीमं विगतकलुषं नूनमध्यायमेतत्,
द्रक्ष्यन्तीशं[३३] परमसुकृतैर्योगिभिर्ध्यायमानम्।
शैवं धाम श्रवणनिरता निर्गतैनोविमोहाः,
भुक्त्वा भोगान्सकलविभवान्सर्ववन्द्याः परत्र ॥७६॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां
किरातेश्वरमाहात्म्यं नाम षट्पञ्चाशदुत्तरशततमोऽध्यायः ॥१५६॥

---

हे विरूपाक्ष ! अब भस्मगङ्गा नाम गरेको निर्मल महाकुण्डमा तिमी जाऊ। त्यहाँ भस्मेश्वर महादेव रहनुभएको छ। जसले यो पवित्र अध्याय सुन्छन् तिनीहरूका सबै पाप र मोह छुट्नेछन्। यस लोकमा तिनीहरूले सबैबाट सम्मान पाउँछन्। यहाँ सम्पूर्ण ऐश्वर्यको भोग गरेर परलोकमा परम पुण्यशाली योगीहरूले ध्यान गरिने भगवान् शिवको धाममा उनीहरू पुग्दछन् ॥७५–७६॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा किरातेश्वर शिवलिङ्गको माहात्म्यनामक
एकसय छपन्नौं अध्याय पूरा भयो।

---

३३. प्राप्यन्तीशम्, इति न.सं.पु.पाठः।

# सप्तपञ्चाशदुत्तरशततमोऽध्यायः

## भस्मगङ्गाकुण्डतीर्थभस्मेश्वरयोर्माहात्म्यम्

स्कन्द उवाच

भूयोऽगमद्विरूपाक्षो यत्र भस्मेश्वरो विभुः। भस्मगङ्गाजले स्नात्वा भस्मेश्वरमपूपुजत् ॥१॥
राधकृष्णनवम्यां स लिङ्गमभ्यर्च्य तन्निशि[1]। अपृच्छत्खलु माहात्म्यं नेमुनिं भक्तितो मुने ॥२॥
आकर्ण्य तद्वचोऽगस्त्य ! सर्वं व्याचष्ट नेमुनिः। भक्तं स्वं लिङ्गमाहात्म्यं तदुत्पत्तिं घटोद्भव ॥३॥

सिद्धर्षिरुवाच

भस्मना च कृते स्नाने महारुद्रेण वै पुरा[2]। एतल्लिङ्गञ्च जानीथाः स्थापितञ्च स्वसाक्षिकम्[3] ॥४॥
भस्मनाऽत्र कृतस्नानः तदादि च महेश्वरः[4]। तस्माद् भस्मेश्वरः प्रोक्तो भुक्तिमुक्तिफलप्रदः ॥५॥
यल्लिङ्गस्पर्शनात्सर्वः सद्यः पूतो भवेद् भृशम्। अपवित्रोऽपि पूतात्मा चाऽसंयतोऽपि संयतः ॥६॥
एतेन भस्मना स्नात्वा चैतल्लिङ्गं निरन्तरम्। देवर्षयः समर्हन्ति यज्ञसम्भवभस्मभिः ॥७॥
शृणु कश्चित्पुरा मुक्तश्चैतल्लिङ्गप्रसादतः। ह्रस्वो नाम द्विजश्चासीत्केरले नगरे द्विज ॥८॥
सम्पत्तौ विद्यमानायामपि श्रेष्ठी वणिक्सुतः[5]। कस्मैचिन्न ददौ दानं धनसञ्चयलालसः[6] ॥९॥
ततः कालान्तरे सोऽपि गङ्गातीरे मृतो द्विज। गङ्गातीरमृतेः पुण्यात्सोऽभूद्विप्रकलेवरः ॥१०॥

---

## अध्याय – १५७

### भस्मगङ्गाकुण्डतीर्थ र भस्मेश्वरको महिमा

कुमार स्वामीले भन्नुभयो – नेमुनिले भनेपछि विरूपाक्ष भस्मेश्वर बस्नुभएको क्षेत्रमा गए र भस्मगङ्गा जलमा स्नान गरेर उनले भस्मेश्वरको पूजा गरे। हे अगस्त्य मुनि ! उनले वैशाखकृष्ण नवमीको रातमा भस्मेश्वर लिङ्गको पूजा गरे र भक्तिपूर्वक नेमुनिसँग त्यस तीर्थको माहात्म्य सोधे। हे अगस्त्य मुनि ! विरूपाक्षको सुनेर नेमुनिले आफ्ना भक्त विरूपाक्षलाई प्रारम्भदेखि नै लिङ्गको माहात्म्य र उत्पत्तिका बारेमा सम्पूर्ण वृत्तान्त सुनाए ॥१–३॥

सिद्धऋषि नेमुनिले भन्नुभयो – हे ब्राह्मण विरूपाक्ष ! पहिले यहाँ भगवान् शङ्करले भस्मले स्नान गर्नुभयो र त्यसपछि आफ्नै साक्षीस्वरूप भएको यस लिङ्गको स्थापना गर्नुभएको हो भन्ने कुरा तिमीले बुझ। भगवान् शङ्करले भस्मले मात्र स्नान गरेको हुँदा त्यसै दिनदेखि भक्तहरूलाई भुक्ति र मुक्ति दिने यो लिङ्ग भस्मेश्वरका नामले प्रसिद्ध भयो। यस लिङ्गको स्पर्शले मात्रै पनि सबै प्राणीहरू तत्काल पवित्र हुन्छन्। यदि कुनै अपवित्र प्राणीले यस लिङ्गको स्पर्श गर्छ भने त्यो पवित्र हुन्छ र असंयमीले स्पर्श गर्दा त्यो व्यक्ति संयमी हुन्छ। देवर्षिहरू यज्ञमा यसै भस्मले स्नान गर्छन् र यज्ञको भस्मद्वारा श्रद्धाभक्तिपूर्वक लिङ्गको नित्य पूजन गर्छन् ॥४–७॥

हे ब्राह्मण ! सुन – पहिले कुनै केरल नाम गरेको शहरमा ह्रस्व नाम भएको ब्राह्मण बस्दथ्यो। त्यो यसै लिङ्गको अनुग्रहबाट मुक्त भएको थियो। ब्राह्मण भए पनि त्यो सेठ कुनै व्यापारीको छोरो थियो। सम्पत्ति हुँदाहुँदै पनि त्यो कसैलाई केही दान नदिने स्वभावको थियो। उसले जीवनमा धनमात्र बटुल्ने काम गऱ्यो। हे विरूपाक्ष ! त्यसपछि कालान्तरमा गएर ऊ गङ्गाको तीरमा मऱ्यो। गङ्गाको तीरमा मरेको पुण्यका प्रभावले त्यो ब्राह्मणको शरीर लिएर जन्मियो ॥८–१०॥

---

१. लिङ्गं पूज्य महानिशि, इति न.सं.पु.पाठः।
२. महारुद्रः पुरा द्विज, इति न.सं.पु.पाठः।
३. एतल्लिङ्गञ्च जानीयात्स्थापितवान्स्वसारिकम्, इति न.सं.पु.पाठः।
४. अद्य प्रभृति शङ्करः, इति न.सं.पु.पाठः।
५. विद्यमाने च सम्पत्तौ महाधानो वणिक् सुतः, इति न.सं.पु.पाठः।
६. केवलं धनसञ्चितः, इति न.सं.पु.पाठः।

अदानात् सञ्चयाच्चैव[७] दरिद्रोऽभूद् द्विजो भृशम्। कष्टवाँश्च ततोऽभूत्स भोज्याभावात्[८] क्षुधार्दितः ॥११॥
चौरवृत्तिं समासाद्य चाहारं बुभुजे सदा। स्वजनस्य गृहे ग्रामे द्रव्यं नित्यमचूचुरत् ॥१२॥
त्यक्तोऽन्वयैर्जनैर्विप्रो भृत्यैरपि च निन्दितः। आप्तैः समुपदिष्टोऽपि[९] दिवा गूढो निशाचरः ॥१३॥
चोरयति[१०] जना धृत्वा बबन्धू रज्जुभिर्दृढम्। अनिन्दत्तं[११] जनः कश्चित्कृतं किमित्यमोचयत् ॥१४॥
कश्चिज्जघान वाक्खड्गैर्बबन्ध तमितस्ततः। दण्डैरताडयत्[१२] कश्चित्कृत्वा धिगिति गर्हयन् ॥१५॥
निःसृतः स्वजनैस्त्यक्तो देशाद्देशं विलङ्घ्य सः। वाराणसीन्ततः प्राप्तः पुराणमशृणोच्छुभम् ॥१६॥
यदेतत्क्षेत्रमाहात्म्यं काश्यामाकर्ण्य हर्षितः। अत्राययौ सुवर्णाढ्यमेतत्पुरं हिरण्यमयम् ॥१७॥
पशुपतेः प्रसादाद्वै धनाढ्योऽहं भवामि च। स्नास्यामि तत्र[१३] वाग्वत्यामिति कृत्वा हृदाययौ ॥१८॥
अपश्यत्स पुरीमेतां मृत्स्नाकाष्ठेष्टिकामयीम्। दुःखातुरोऽभवद् ह्रस्वो हा दैवेति वदन्मुहुः ॥१९॥
शौचैर्विवर्जितो ह्रस्वो भ्रष्टाचारश्च सर्वभुक्। मिथ्यावादी दिवा गूढो निशि चौर्योत्सुकः शठः ॥२०॥
एवं त्रिवत्सरं यावच्चौरश्चाऽत्र शिवालये। सकृत्स्नात्वा च वाग्वत्यां ह्रस्वोऽवात्सीद्धि सन्ततम् ॥२२॥
मार्गकृष्णचतुर्दश्यां कश्चिद्यतेरचूचुरत्। पोटलिकां स विश्वास्य[१४] चादायाऽत्र ययौ मुदा ॥२३॥
कृत्वा किमिति ह्रस्वः स तद्बन्धनममोचयत्। भस्मपिण्डं ददर्शाशु भक्ष्याभावात्क्षुधार्दितः ॥२४॥

---

कसैलाई केही नदिएको र केवल द्रव्य सञ्चय गरेको हुँदा त्यो ब्राह्मण अत्यन्त दरिद्र भयो। गरीबीका कारण घरमा खाने कुरा केही नहुँदा त्यो अत्यन्त भोकायो र पीडित भई सदा दुःखी बन्यो। त्यसपछि उसले चोरवृत्ति अपनाएर खानेकुरा खान थाल्यो। ऊ आफन्त व्यक्तिका घर-गाउँमा गएर दिनदिनै सम्पत्ति चोर्न थाल्यो। यसकारण आफन्तहरूले पनि उसलाई परित्याग गरे, सेवकहरूले पनि निन्दा गर्न थाले। जति उपदेश दिए पनि त्यो दिनभर बस्ने र रातमा हिँड्ने गर्थ्यो ॥११-१३॥

चोर्न लागेको बेलामा समातेर मानिसहरूले उसलाई डोरीले बेस्सरी बाँधे र गाली गरे। त्यसलाई कुनै एकजना मान्छेले के गरेको भनेर गाली गर्दै छुट्याइदियो। कुनै आफन्तले उसलाई बोलीरूपी तरबारले हिर्कायो, कसैले यताउति बाँधे, कसैले 'तँलाई धिक्कार छ' भनेर निन्दा गर्दै उसलाई लौराले हिर्काए। यसरी निन्दित भई आफन्तहरूले निकालिदिएपछि त्यो ब्राह्मण एक्लै एक देशबाट अर्को देश पार गर्दै वाराणसीमा पुग्यो। त्यहाँ उसले कल्याणकारक पुराण सुन्यो। पुराणमा नेपालशहरलाई सुनैसुनले भरिपूर्ण वा सुवर्णमय नगर भनेर वर्णन गरिएको सुनेपछि ऊ अत्यन्त खुसी भयो। त्यसपछि त्यो ब्राह्मण सरासर नेपालको सुवर्णनगरीमा आयो ॥१४-१७॥

त्यो ब्राह्मण पशुपतिको अनुग्रहले म पनि सम्पन्न हुनेछु र वाग्वतीमा स्नान गर्नेछु भन्ने हृदयले विचार गरेर यहाँ आएको थियो। उसले यहाँ आउँदा यस शहरलाई माटो, काठ र ईंटले मात्र बनेको देख्यो। त्यसपछि त्यो ह्रस्व नाम गरेको ब्राह्मण बारम्बार हा दैव ! भन्दै दुःखमनाउ गर्न थाल्यो। ह्रस्वनामक त्यो ब्राह्मण स्नान, शौचादि गर्दैनथ्यो, उसको आचार भ्रष्ट थियो, सर्वभक्षी थियो, असत्य बोल्थ्यो, दिउँसो लुक्थ्यो र रातमा चोर्न हिँड्ने स्वाँठ थियो। ऊ दिनभरि यताउति लुक्थ्यो। ऊ निरन्तर चौर्यवृत्ति अँगालेर निरन्तर यस शहरमा बस्न थाल्यो। यसरी तीन वर्षसम्म त्यो चोर ब्राह्मण वाग्वतीमा एकपटक स्नान गरेर शिवालयमा बस्ने गर्दथ्यो। एकपटक मार्गकृष्ण चतुर्दशीका दिन कुनै एउटा जोगीलाई विश्वासमा पारेर पोको चोरेर खुसी हुँदै त्यो यही शिवालयमा आयो। ह्रस्वले यसभित्र के छ भनेर त्यो पोकाको गाँठो फुकायो। उसले त्यहाँभित्र खरानीको डल्लो देख्यो, त्यहाँ खानेकुरा थिएन, त्यो भोकले अत्यन्त पीडित भएको थियो ॥१८-२४॥

---

७. अदानात्सञ्चयद्रव्यात्, इति न.सं.पु.पाठः।
८. अन्नाभावात्, इति न.सं.पु.पाठः।
९. हितोपदेशितोऽप्याप्तैः, इति न.सं.पु.पाठः।
१०. चौर्यमाणे, इति न.सं.पु.पाठः।
११. गर्हयन्तम्, इति न.सं.पु.पाठः।
१२. ताडयल्लगुडैः, इति न.सं.पु.पाठः।
१३. स्नायिष्यामि च, इति न.सं.पु.पाठः।
१४. निस्वस्य, इति न.सं.पु.पाठः।

भस्म प्रेक्ष्य तदा ह्रस्वः स्नाहीति च वदन् शिवम्। विचूर्ण्य भस्म पाणिभ्यां लिङ्गोपरि रुषाऽक्षिपत् ॥२५॥
निराहारः स विप्रस्तु निशां तत्र व्यतीतवान्। उन्मत्तवत् क्षुधार्त्तो हि शिवेति च वदन्मुहुः ॥२६॥
एतद्भस्मप्रलिप्ताङ्गश्चौर्यं कर्तुं जगाम स[१५]। चौर्यारम्भे[१६] निशि ह्रस्वं कश्चिन्नरस्तमग्रहीत् ॥२७॥
मुष्टिभिश्चरणैर्ह्रस्वं गृहस्था लगुडैः पुनः। विविधुस्तमजस्रं तद्यावच्छक्तिश्च विद्यते ॥२८॥
ततो निःसारयामासुः ताडितं तं मुहुश्च ते[१७]। सोऽपि शनैः शनैरार्त्तश्चाऽत्राययौ शिवालये ॥२९॥
अमावास्यां स मार्गस्य चाऽत्र प्राङ्गणके मृतः। एतद्विभूतिगङ्गाम्भोविलिप्ताङ्गललाटकः ॥३०॥
आययुर्यमदूतास्तं दण्डैः सन्तर्ज्य चाऽवदन्। पापं त्वां क्षेपयिष्यामो नरके चाऽज्ञया प्रभोः ॥३१॥
इहागत्य द्रुतं शैवा याने दधुर्मुदा हि तम्। निर्जित्य तरसा याम्यान्निन्युः शिवपुरं महत् ॥३२॥
सोऽप्यभवद् गणश्रेष्ठो ह्रस्वनामा महाबली। रुद्रस्याऽनुचरो नित्यं गणश्रेष्ठो हि ब्राह्मणः ॥३३॥
एनाञ्च वत्सलां देवीं सम्पूजयाशु भक्तितः। स्त्रीषु प्रीतिं समाप्नोति योऽर्चत्येनां हरप्रियाम् ॥३४॥
तां जयमङ्गलां देवीं सम्पूजय जयप्रदाम्। युद्धे जयं समाप्नोति योऽर्चति विजयेच्छया[१८] ॥३५॥
भूयो गच्छ विरूपाक्ष ! यत्रास्ते भुवनेश्वरः। देव्या च भुवनेश्वर्या सह निरन्तरं विभुः ॥३६॥

भस्मेश्वरस्यार्य शृणोति भक्त्या माहात्म्यमेतद्धि नरो विपापः।
प्राप्नोति कामं हृदयेप्सितं स भुक्त्वा च भोगान् व्रजतीशलोकम् ॥३७॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां भस्मगङ्गाकुण्डतीर्थभस्मेश्वरयोर्माहात्म्यं नाम सप्तपञ्चाशदुत्तरशततमोऽध्यायः ॥१५७॥

---

भस्मको डल्लो देखेपछि उसले हातले खरानीको डल्लोलाई चूर्ण तुल्यायो र 'लौ नुहा' भन्दै रिसाउँदै त्यो भस्मलाई शिवजीमाथि फ्याँक्यो। निराहार बसेको त्यस ब्राह्मणले भोकले आत्तिएर पागलजस्तै बनी शिव ! शिव ! भन्दै त्यहाँ रात बितायो। त्यो ब्राह्मण त्यही पोकाको भस्म शरीरभरि दलेर राति चोरी गर्नका लागि हिँड्यो। रातमा चोर्दाचोर्दै कुनै मानिसले त्यस ह्रस्वलाई समात्यो। त्यसपछि त्यहाँका गृहस्थीहरूले उसलाई मुठीले, गोडाले र लौराले आफ्नो शक्तिले भ्याएसम्म धेरै पिटे ॥२५-२८॥

बेस्सरी पिटेर उनीहरूले त्यस चोरलाई त्यहाँबाट निकालिदिए। आत्तिएको त्यो चोर ब्राह्मण बिस्तारै बिस्तारै यसै शिवालयमा आयो। मार्गकृष्ण अमावास्याका दिन शरीरका अङ्गहरूमा त्यही विभूति र भस्मगङ्गाको लगाएर सुतेको सुत्यै ऊ यसै आँगनमा मऱ्यो। त्यसपछि यमराजका दूतहरू त्यहाँ आए र यमराजको आज्ञा अनुसार 'यस पापीलाई हामी नरकमा लैजान्छौं' भन्दै गाली गर्न थाले। तुरुन्त यहाँ शिवजीका दूतहरू पनि आइपुगे। हत्त न पत्त यमराजका दूतहरूलाई जितेर उनीहरूले त्यस ब्राह्मणलाई शिवजीको लोकमा लगे। त्यो ह्रस्वनामक ब्राह्मण अत्यन्त शक्तिशाली र गणको नेता भयो र शिवजीको अनुचर भएर बस्यो ॥२९-३३॥

हे ब्राह्मण विरूपाक्ष ! अब तिमी वत्सलादेवीको भक्तिपूर्वक पूजा गर। जसले यी देवीको पूजा गर्छ त्यसले आफ्नी पत्नीको सच्चा प्रेम पाउँनेछ। त्यसपछि तिमीले विजय दिने जयमङ्गला देवीको पूजा गर। जसले विजयको इच्छा राखेर यी देवीको पूजा गर्छ त्यसले युद्धमा अवश्य विजय पाउँनेछ ॥३४-३५॥

हे विरूपाक्ष ! जहाँ सधैं भुवनेश्वरी देवीका साथ भुवनेश्वर महादेव बसिरहनुभएको छ, अब तिमी त्यस ठाउँमा जाऊ ॥३६॥

हे विरूपाक्ष ! जुन मानिसले भक्तिपूर्वक भस्मेश्वरको यो माहात्म्य सुन्छ, त्यसले मनमा लागेका सम्पूर्ण इच्छा पूर्ण गर्छ र विभिन्न भोगहरू भोग्दै अन्त्यमा शिवलोक जान्छ ॥३७॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा भस्मगङ्गाकुण्डतीर्थ र भस्मेश्वरको माहात्म्यनामक एकसय सन्ताउन्नौं अध्याय पूरा भयो।

---

१५. ...त्यायितुमगमत्पुनः, इति न.सं.पु.पाठः। १६. स्तेयमाने, इति न.सं.पु.पाठः।
१७. ततो निःसारयच्चौरं ताड्यमानं मुहुश्च ते, इति न.सं.पु.पाठः। १८. जयकाङ्क्षितः, इति न.सं.पु.पाठः।

# अष्टपञ्चाशदुत्तरशततमोऽध्यायः

## भुवनेश्वरशिवलिङ्गमाहात्म्यम्

स्कन्द उवाच

भूयोऽगमद्विरूपाक्षो नेमुनिना समं मुने। प्रतीच्यां दिशि तस्माद्धि यत्रास्ते भुवनेश्वरः ॥१॥
ज्ञानकुण्डे ततः स्नात्वा भुवनेशमपूपुजत्। राधकृष्णैकादश्यां वै विनिद्रोऽभूद्विरूपदृक् ॥२॥
पप्रच्छ तस्य माहात्म्यं भुवनेशस्य नेमुनिम्। भक्त्या निशि विरूपाक्षः श्रद्दधानो हि कुम्भज ॥३॥
आकर्ण्य तद्वचोऽगस्त्य ! व्याजहार च नेमुनिः। तल्लिङ्गस्य च माहात्म्यं महारात्रौ मुने मुदा ॥४॥

नेमुनिरुवाच

आविर्भूतो च यदा चाऽत्र पशुपतिर्महाविभुः[१]। देवोऽसौ भुवनाख्यश्च कश्चिदत्राययौ भ्रमन्[२] ॥५॥
एतल्लिङ्गं सहर्षञ्च स्थापितं भुवनेन वै। तप्तं तेन[३] कठोरञ्च दिव्यं सहस्रवत्सरम् ॥६॥
सुप्रसन्नाद्[४] वरं लब्ध्वा महादेवात्सुनिश्चयम्। प्रययौ हि स्वकं राज्यं तस्थौ निश्चलविग्रहः ॥७॥
भुवनेश्वर इत्याख्यः सर्वलोकैस्तदा शिवः[५]। पूजितो वरप्राप्त्यर्थं[६] सर्वेप्सितवरप्रदः ॥८॥
एतल्लिङ्गस्य माहात्म्यं शृणु वच्मि महात्मनः। काचिन्मुक्ता पुरा चाऽत्र चैतल्लिङ्गप्रसादतः ॥९॥
आसीद्वैश्या पुरा विप्र ! नाम्ना मधुस्रवा श्रुता। मृते भर्त्तरि विट्पुत्री स्वच्छन्दगमना निशि ॥१०॥
हस्तिनाख्यनगर्यां सा चावासीत्पुंश्चली सदा। स्वगोत्रैर्बान्धवैस्त्यक्ता यावद् द्वादशवत्सरम् ॥११॥

---

## अध्याय - १५८

### भुवनेश्वर शिवलिङ्गक महिमा

कुमार स्वामीले भन्नुभयो - हे अगस्त्य मुनि ! त्यसपछि विरूपाक्ष पश्चिम दिशातर्फ जहाँ भुवनेश्वर विराजमान हुनुहुन्थ्यो त्यसै क्षेत्रमा गए। त्यहाँ पुगेपछि उनले ज्ञानकुण्डमा स्नान गरेर भुवनेश्वरको अर्चना गरे र वैशाखशुक्ल एकादशीका दिन विरूपाक्ष जाग्राम बसे। हे अगस्त्य मुनि ! विरूपाक्षले रातमा श्रद्धाभक्तिपूर्वक नेमुनिसँग ती भुवनेश्वरको माहात्म्य सोधे। हे अगस्त्य मुनि ! भुवनेश्वरका विषयमा विरूपाक्षले गरेको प्रश्न सुनेर नेमुनिले रातमा आनन्दपूर्वक उनलाई त्यस लिङ्गको माहात्म्य बताउनुभयो ॥१-४॥

नेमुनिले भन्नुभयो - जुनसमयमा यहाँ महाविभु पशुपतिको उत्पत्ति भएको थियो त्यही समयमा यहाँ भुवन नाम गरेका एक राजा आएका थिए, । अत्यन्त प्रसन्न भएर राजा भुवनले यो लिङ्गको स्थापना गरी दिव्य हजार वर्षसम्म कठोर तपस्या गरे। त्यसपछि ती राजा पनि महादेवबाट निश्चित वर पाएर निश्चल भई आफ्नो राज्यमा गएर बसे। त्यसै समयदेखि सबै मानिसले यस लिङ्गलाई भुवनेश्वर भन्न लागे। यस लिङ्गबाट धेरै प्राणीहरूले वर पाएका छन्। यो साक्षात् महादेवको रूप हो। यसको आराधनाबाट इच्छित वर प्राप्त हुन्छ। अत्यन्त गौरवशाली यस लिङ्गको माहात्म्य म तिमीलाई बताउँछु, सुन। पहिले कुनै समयमा यही लिङ्गको अनुग्रहबाट कुनै नारी मुक्त भएकी थिइन् ॥५-९॥

हे ब्राह्मण विरूपाक्ष ! अघि कुनै वैश्यकी मधुस्रवा नामले प्रसिद्ध छोरी थिई। लोग्ने मरेपछि मधुस्रवा राति-राति स्वच्छन्दसित विचरण गर्न लागी। त्यसपछि आफ्ना सगोत्री र दाजुभाइबाट परित्यक्त भएकी त्यो मधुस्रवा बाह्र वर्षसम्म हस्तिनापुरमा वेश्या भएर बसी ॥१०-११॥

---

१. उद्भूतं यदा चात्र पशुपतिं महाविभुम्, इति न.सं.पु.पाठः।
२. अत्रायया मुदान्वितः, इति न.सं.पु.पाठः।
३. भृशम्, इति न.सं.पु.पाठः ॥
४. भुवनोऽपि, इति न.सं.पु.पाठः।
५. द्विज, इति न.सं.पु.पाठः।
६. लोकवरप्रदः, इति न.सं.पु.पाठः।

वेश्या भूत्वापि साऽजस्रं जहौ नैव हरव्रतम्। रुद्रभक्तिरता नित्यं शिवपूजनतत्परा ॥१२॥
भ्राता ददौ विषं तस्यै लोकनिन्दात्रपेर्ष्यया। म्रियतामिति कृत्वा सा त्यक्ष्यामि तच्च लाञ्छनम् ॥१३॥
ज्ञातवती विषं सा च भ्रात्रा दत्तञ्च मृत्यवे। न बुभुजे तदा क्ष्वेडं हिताय चात्मनो द्विज ॥१४॥
उदासीनमना भूत्वा निर्ययौ नगराद्बहिः। ग्रामाद् ग्रामान्तरं भ्रान्त्वा काशीं प्राप्तवती पुनः ॥१५॥
अशृणोत्सा च माहात्म्यं तस्यां हिमवतो वरम्। एतत्पुर्यास्तथा विप्र ! मत्क्षेत्रस्य विशेषतः ॥१६॥
पञ्चाशद्वर्षदेशीया[७] वेश्या सा लोकनिन्दिता। कञ्चिन्नरं समालम्ब्य चाऽत्र गन्तुं प्रचक्रमे ॥१७॥
श्रुत्वा माहात्म्यमेतस्य चेहाययौ मधुस्रवा। ज्ञानकुण्डे ततः सस्नौ वाग्वत्यां सततं पुनः ॥१८॥
अवात्सीत्सततं वेश्या चाऽत्र लिङ्गालये द्विज। भिक्षां प्रार्थ्य जनेभ्यः सा बुभुजे[८] यद्धि तत्सुखम् ॥१९॥
मार्जनेन च सा नित्यं सम्ममार्ज हरालयम्[९]। प्राङ्गणेऽभ्यन्तरे वेश्या जपन्ती शम्भवे नमः[१०] ॥२०॥
एवं संवत्सरञ्चैकं सम्ममार्ज सुयन्त्रिता[११]। एतल्लिङ्गस्य भूमिं सा सन्ध्ययोर्जापतत्परा[१२] ॥२१॥
माघकृष्णस्य चाऽष्टम्यां शीतार्ता सा महानिशि। असूञ्जहौ स्थलेऽत्रैव[१३] हे रुद्र ! ब्रुवती मुहुः ॥२२॥
रुद्रगणा विमाने तामाधाय त्वरितं ययुः। रुद्रलोकं महोत्साहगीतवाद्यमहोत्सवैः ॥२३॥
साऽप्यभवद् भवान्या वै चाऽनुचरी च योगिनी। एतल्लिङ्गप्रसादाच्च ह्यत्र मार्जनधर्मतः ॥२४॥
कश्चिन्मुक्तः पुरा विप्रः शृणु विरूपदृक् पुनः। एतल्लिङ्गप्रसादाच्च ज्ञानकूपजलाप्लवात् ॥२५॥
पूर्वजन्मनि चाऽन्येषां बुद्धिं समग्रहीन् नृपः। परीक्षितुञ्च कस्मैचित्स्वबुद्धिं नाऽप्रकाशयत् ॥२६॥

---

वेश्या भए पनि शिवजीको भक्तिमा दृढ हुँदै उहाँको पूजामा तल्लीन रहने त्यस स्त्रीले शङ्करको व्रत लिन कहिल्यै छोडिन । उसको भाइले दुनियाँबाट हुने निन्दा, लाज र ईर्ष्याले गर्दा यो कलङ्कलाई छोडिदिन्छु, यो मरोस् भनेर विष खान दियो ॥१०-१३॥

हे विरूपाक्ष ! भाइले आफूलाई मार्नका लागि विषय दिएको कुरा उसले चाल पाई र आफ्नो हितका लागि उसले त्यस समयमा विष खाइन। त्यसपछि उदासीन भएर ऊ त्यो शहरबाट बाहिर निस्किई र एक गाउँबाट अर्को गाउँ घुम्दै पुनः काशीनगरीमा पुगी। त्यस नगरीमा उसले हिमालय, विशेष गरी यो शहर अनि मेरो क्षेत्र(नेपाल)को माहात्म्य सुनी। कुनै मान्छेलाई साथमा लिएर पचास वर्ष पुगेकी लोकनिन्दित त्यस वेश्या यहाँ आउने विचार गरी। मधुस्रवा यस क्षेत्रको माहात्म्य सुनेर यस स्थानमा आई अनि ज्ञानकुण्ड र वाग्वतीमा स्नान गरी ॥१४-१८॥

हे विरूपाक्ष ! त्यो वेश्या सधैँ यसै शिवलिङ्ग रहेको भवनमा बस्न थाली। ऊ मानिसहरूसित भिक्षा मागेर सुखपूर्वक खाने गर्थी। शिवजीको मन्दिरको भित्र तथा बाहिर आँगनमा हर ! शिव ! भन्दै ऊ नित्य बढार्ने गर्दथी। एक वर्षसम्म त्यसले भगवान् शङ्करको नाम लिँदै बिहान तथा साँझको सन्ध्यामा यो लिङ्ग भएको क्षेत्रलाई बढारबुढुर गरी। माघकृष्ण अष्टमीको रातमाजाडोले पीडित भएर त्यो वेश्याले बारम्बार हे रुद्र ! भन्दै प्राणत्याग गरी। मरेपछि उसलाई तत्काल रुद्रका गणहरूले विमानमा राखेर बडो उत्साहका साथ गीत गाउँदै, बाजा बजाउँदै र उत्सव गर्दै शिवलोक लगे। मधुस्रवाले यस क्षेत्रको सरसफाइ गर्दा प्राप्त भएको लिङ्गको कृपाले गर्दा भगवती पार्वतीकी सेविका योगिनी भएर बस्ने सौभाग्य पाई ॥१९-२४॥

हे विरूपाक्ष ! अघि कुनै ब्राह्मण ज्ञानकूपको जलमा गरेको स्नान र यस लिङ्गको अनुग्रहले गर्दा मुक्त भएका थिए, सुन। कुनै राजाले आफ्नो पूर्वजन्ममा परीक्षणका लागि अरूका विचार मात्र सङ्ग्रह गर्थे तर आफ्नो विचार कसैलाई पनि भन्दैनथे। ती राजा कुनै दिन तीर्थयात्रा गर्न गएका थिए ॥२५-२६॥

---

७. पञ्चाशाब्दवयोपेता, इति न.सं.पु.पाठः।
८. भुञ्जीत, इति न.सं.पु.पाठः।
९. समार्जयद्धरालयम्, इति न.सं.पु.पाठः।
१०. हरः शिवेति वै वदन, इति न.सं.पु.पाठः।
११. यावत्सम्मार्जयत्तदा, इति न.सं.पु.पाठः।
१२. सन्ध्ययोर्नाम संवदन, इति न.सं.पु.पाठः।
१३. असून् जहौ च साऽत्रैव, इति न.सं.पु.पाठः।

एतत्खर्वरिकातीर्थे सस्नौ तीर्थाटनो नृपः । तत्पुण्यस्य प्रभावात्स विप्रोऽभूच्छ्रुतिवर्जितः ॥२७॥
प्राग्जन्मनो हि दोषेण चाज्ञोऽभूद्विप्रविग्रहः । आर्यातीर्थप्रसादाच्च सत्यैर्विवर्जितोऽनिशम् ॥२८॥
मर्कटास्यः पुनश्चासौ चाऽत्राऽवासीच्च निर्जनः । याचकवृत्तिमाश्रित्य ज्ञानकूपजलं पपौ ॥२९॥
तज्जलपानमात्रेण[१४] स चाऽज्ञो ज्ञानवान् ध्रुवम् । अभूत्तदैव तत्कूपे नित्यं सस्नौ सुभक्तितः ॥३०॥
एतल्लिङ्गं समानर्च जगौ गीतानि भक्तितः[१५] । अत्र पुष्पफलैस्तोयैः परिक्रम्य पुनर्हि सः ॥३१॥
चतुर्थवत्सरं यावन्निरन्तरमसेवत[१६] । स्वात्मानञ्च निवेद्यार्घ्यं[१७] महादेवाय भक्तितः ॥३२॥
स मर्कटाननो भिक्षुः पञ्चत्वं प्राप्तवान्निशि । पौषकृष्णचतुर्दश्यामेतल्लिङ्गान्तिके द्विज ॥३३॥
शैवा याने तमास्थाय निन्युः शिवपुरं गणाः । गीतवाद्यमहोल्लासैरप्सरोभिः प्रसेवितम्[१८] ॥३४॥
सोऽप्यभवद् गणश्रेष्ठो रुद्रस्याऽनुचरोऽनिशम् । एतल्लिङ्गप्रसादाद्वै ज्ञानकुण्डजलाप्लवात् ॥३५॥
भूयो गच्छ विरूपाक्ष रुद्रागारेश्वरं शिवम्[१९] । रुद्रस्नानोदके कुण्डे स्नात्वाऽर्चय सभक्तिकम्[२०] ॥३६॥

ये शृण्वन्ति प्रसभमनिशं सम्यगध्यायमेनं
ते प्राप्स्यन्ति द्रुतमसुभृतां दुर्लभं लोकभद्रम् ।
एनोवर्गे रहितवपुषः प्राक्कृतैश्चाऽद्यजातै-[२१]
र्भुक्त्वा भोगानिह खलु सुचिरं पूर्णवाञ्छश्च धन्याः[२२] ॥३७॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां भुवनेश्वरमाहात्म्यं नाम अष्टपञ्चाशदुत्तरशततमोऽध्यायः ॥१५८॥

---

तीर्थयात्रामा निस्केका ती राजाले खर्वरिका नाम गरेको तीर्थमा स्नान गरे । जसले गर्दा उनी ब्राह्मण भएर जन्मिए पनि उनलाई वेदको ज्ञान भएन । आर्यातीर्थको अनुग्रहले गर्दा ब्राह्मण भएर जन्मिए पनि पूर्वजन्मको दोषले यिनी सधैं सत्य अर्थात् ज्ञानबाट विमुख भएका थिए ॥२५-२८॥

बाँदरको मुख भएका यी ब्राह्मण एक्लै यसै तीर्थमा बसे । माग्ने वृत्ति अँगालेर बसेका उनी ज्ञानकूपको जलपान गर्थे । त्यस कुवाको जल धेरै पिएको हुनाले अज्ञानी ती ब्राह्मण ज्ञानी भए । उनले सधैं भक्तिपूर्वक यस कुवामा स्नान गरे । यस ठाउँमा परिक्रमा गरेर भक्तिपूर्वक भगवान्‌को भजन गाउँदै फूल, फल र जल लिएर उनले यस लिङ्गको पूजा गरेका थिए । हे विरूपाक्ष ! उनले अर्घ्यसँगै आफूलाई समेत भक्तिपूर्वक महादेवलाई समर्पित गरी चार वर्षसम्म नित्य यस लिङ्गको आराधना गर्ने गर्थे ॥२९-३२॥

हे विरूपाक्ष ! बाँदरको जस्तो मुख भएका ती भिक्षु पौषकृष्ण चतुर्दशीका दिन राति यसै लिङ्गको समीपमा मरे । शिवदूतहरूले अप्सराहरूद्वारा सेवा गरिएका उनलाई यानमा राखेर गीत गाउँदै, बाजा बजाउँदै र उत्सव गर्दै शिवलोकमा लगे । ज्ञानकुण्डको स्नान र यस लिङ्गको अनुग्रहले गर्दा उनी प्रमथगणका नेता भएर रुद्रका सेवक बन्न पुगे ॥३३-३५॥

हे विरूपाक्ष ! अब तिमी जहाँ रुद्रागारेश्वर भगवान् बस्नुभएको छ, त्यहाँ जाऊ र रुद्रकुण्डमा स्नान गरेर भगवान् शिवको आराधना गर ॥३६॥

हे विरूपाक्ष ! जसले यो अध्याय कुनै पनि किसिमले राम्रोसँग नित्य सुन्दछन्, तिनीहरूले प्राणीहरूले प्राप्त गर्न नसक्ने कल्याणदायक लोक प्राप्त गर्दछन् । पूर्वजन्ममा नराम्रो काम गरेको भए पनि यस जन्ममा पापबाट मुक्त भएर धेरै समयसम्म सांसारिक सुखभोग गर्दै उनीहरूले इच्छा अनुसारको फल पाउँछन् र तिनीहरू धन्य छन् ॥३७॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा भुवनेश्वरको माहात्म्यनामक
एकसय अन्ठाउन्नौं अध्याय पूरा भयो ।

---

१४. तज्जलापीतमात्रेण, इति न.सं.पु.पाठः ।
१५. भक्तिभावैश्च गीतवान्, इति न.सं.पु.पाठः ।
१६. यावन्नित्यमेवमसेवयत, इति न.सं.पु.पाठः
१७. स्वात्माने निवेद्यार्घ्यम्, इति न.सं.पु.पाठः ।
१८. प्रसेवयन्, इति न.सं.पु.पाठः ।
१९. रुद्रागारेश्वरो विभुः, इति न.सं.पु.पाठः ।
२०. पूजयत शिवम्, इति न.सं.पु.पाठः ।
२१. प्राक्कृतैश्चाप्यसज्जैः, इति न.सं.पु.पाठः ।
२२. सुचिरं वाञ्छितार्थाश्च यान्यान्, इति न.सं.पु.पाठः ।

# ऊनषष्ट्युत्तरशततमोऽध्यायः

## रुद्रागारेश्वरशिवलिङ्गमाहात्म्यम्

स्कन्द उवाच

सिद्धोऽसौ चाऽगमद्यत्र रुद्रागारेश्वरः पुनः । सिद्धर्षिणा सहाऽगस्त्य ! स्थित्वा च द्वे निशे[1] मुदा ॥१॥
राधाकृष्णत्रयोदश्यां रुद्रस्नानोदकोत्तमे । रुद्रागारेश्वरं लिङ्गं स्नात्वा चाऽपूपुजद्धि सः ॥२॥
तन्निशायां विरूपाक्षो माहात्म्यं नेमुनिं पुनः । भक्त्याऽपृच्छत् प्रणम्यादौ तल्लिङ्गस्य घटोद्भव ॥३॥
आकर्ण्य तद्वचो रात्रौ तन्माहात्म्यञ्च नेमुनिः । व्याजहार वचो भूयः श्रद्धानाय भक्तितः ॥४॥

नेमुनिरुवाच

रुद्रेण स्थापितं पूर्वमेतल्लिङ्गं स्वयं द्विज । शयनाय स्वकीयाय रहःसुखेप्सया सदा ॥५॥
तस्मात्ख्यातश्च लोकेषु रुद्रागारेश्वरो विभुः[2] । भुक्तिमुक्तिप्रदः साक्षाद् भक्ताय वाञ्छितार्थदः ॥६॥
शृणु सिद्ध ! प्रवक्ष्यामि कश्चिन्मुक्तः पुराऽत्र ते । एतल्लिङ्गप्रसादात्स रुद्रस्याऽनुचरोऽभवत् ॥७॥
आसीदत्र विरूपाक्ष ! किरातानां गरिष्ठकः । शङ्कुर्नाम बली म्लेच्छः किरातैरावृतः सदा ॥८॥
तुलास्थिते रवौ कैश्चिन्म्लेच्छैः सह धनुर्धरः । मृगयामगमच्छङ्कुर्बलाकेश्वरकानने ॥९॥
धर्मेश्वरं महालिङ्गं शङ्कुर्ददर्श पूजितम् । नानापुष्पोपहारैश्च ऋषिवृन्दैर्महोत्सवैः ॥१०॥
अन्ये म्लेच्छाश्च तल्लिङ्गं स्थगितगतयः क्षणम् । किमिति समुपाश्रित्य प्रणेमुस्तैः प्रपूजितम् ॥११॥
पश्यन्नपि ययौ शङ्कुर्वने ह्यदर्शको यथा[3] । विहायानुचरान् सद्यस्तत्प्रेक्षणोत्सुकांस्तदा ॥१२॥

---

अध्याय – १५९

रुद्रागारेश्वर शिवलिङ्गको महिमा

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! त्यसपछि विरूपाक्ष सिद्धर्षि नेमुनिलाई साथमा लिएर जहाँ रुद्रागारेश्वर विराजमान हुनुहुन्थ्यो त्यसै ठाउँमा आए र दुई रात त्यहाँ बसे । वैशाखकृष्ण त्रयोदशीका दिन उत्तम रुद्रस्नानोदक नाम गरेको तीर्थमा स्नान गरेर उनले रुद्रागारेश्वर शिवलिङ्गको पूजा गरे ॥१–२॥

हे अगस्त्य मुनि ! त्यसै दिन राति लिङ्गलाई प्रणाम गरेर विरूपाक्षले नेमुनिसित त्यस लिङ्गको माहात्म्य सोधे । त्यो वचन सुनेर नेमुनिले राति भक्ति र श्रद्धाले ओतप्रोत बनेका विरूपाक्षलाई त्यस लिङ्गको माहात्म्य बताउनुभयो ॥३–४॥

नेमुनिले भन्नुभयो – हे विरूपाक्ष ! यो लिङ्ग अघि भगवान् रुद्रले एकान्त स्थलमा शयन गरी आनन्द लिनका लागि आफैँ स्थापना गर्नुभएको हो । त्यसैले यो लिङ्ग साक्षात् रुद्रागारेश्वरका नामले संसारमा प्रसिद्ध भएको छ । यसले आफ्ना भक्तहरूलाई भुक्ति, मुक्ति र इच्छा लागेको वस्तु दिन्छ । हे विरूपाक्ष ! अघि कुनै व्यक्ति यस ठाउँमा यही लिङ्गको कृपाबाट शिवजीको सेवक बन्न पुगेको थियो । त्यो कथा बताउँछु, सुन ॥५–७॥

हे विरूपाक्ष ! यहाँ अघि शङ्कु नाम गरेको बलियो किरातजातिको मानिस थियो । उसलाई अरू किरातहरूले सधैँ घेरिरहेका हुन्थे । सूर्य तुला राशिमा पुगेको बेला कार्तिक महिनामा म्लेच्छहरूलाई साथमा लिएर धनुर्धारी शङ्कु नाम गरेको म्लेच्छ बलाकेश्वर भगवान् रहनुभएको जङ्गलमा शिकार खेल्न गयो । त्यहाँ शङ्कुले विभिन्न किसिमका फूल र पूजासामग्री लिएर बडो उत्सवका साथ ऋषिहरूद्वारा पूजा गरिएको अवस्थामा शिवजीको धर्मेश्वर महालिङ्गको दर्शन गर्‍यो । अरू म्लेच्छहरूले पनि हिँड्न छोडेर 'के रहेछ हेरौँ' भनी शिवलिङ्गको नजिकै गए र पूजित शिवलिङ्गलाई प्रणाम गरे । तर शङ्कुले भने पूजा गरेको देखे पनि नदेखेजस्तै गरेर हेर्न गएका आफ्ना साथीहरूलाई समेत छोडेर गयो ॥८–१२॥

---

१. उपित्वा, इति न.सं.पु.पाठः ।
२. लोकेषु लिङ्गं रुद्रमन्दिरेश्वरः, इति न.सं.पु.पाठः ।
३. इव ह्यदर्शकः, इति न.सं.पु.पाठः ।

तेऽपि तत्र द्रुतं गत्वा समूचुः[४] शङ्कवे तदा। लिङ्गोत्सवस्य वृत्तान्तं हार्देन सहसा द्विज ॥१३॥
आकर्ण्य वचनं तेषां शङ्कुर्व्याचष्ट सत्त्वरम्। न दृष्टः स[५] सखेऽस्माभिर्मुनिभिः पूजितो हरः ॥१४॥
इत्युक्त्वा प्रययौ शङ्कुर्मृगान् हन्तुं वनेचरान्। मुनिभिः पूजिते रुद्रे दृष्टेऽप्यनृतभाषणः[६] ॥१५॥
हत्वा जन्तून् वने शङ्कुर्यावदस्तं गते रवौ। तन्मांसानि समादाय गन्तुं प्रचक्रमे गृहम् ॥१६॥
तस्य ते च सखायोऽपि त्यक्त्वा तं[७] गृहमाययुः। तद्वनेऽदृश्यमानन्ते कुत्र गत इति ब्रुवन् ॥१७॥
मांसभारं समादाय शङ्कुर्विनिर्ययौ वनात्। एतन्महास्थलीकूटे यावन्न प्राप्तवान्भवेत् ॥१८॥
तावच्छङ्कोर्विहीने द्वे तेजोभिर्लोचने द्विज[८]। स्थगितायां सृतौ तस्य सन्ध्यायां मांसभारिणः[९] ॥१९॥
दृश्यमानञ्च तल्लिङ्गमृषिवृन्दैः प्रपूजितम्। नेति दृष्टं मृषा प्रोक्तं तत्पापैः सोऽन्धकोऽभवत् ॥२०॥
तत्रैव पतितो रात्रौ भाराक्रान्तः परिश्रमात्। तेजोविहीननेत्रत्वाद् द्रष्टुं नैव शशाकः ह[१०] ॥२१॥
ततः प्राप्तो मुनिः कश्चित्तं प्रेक्ष्य कृपया युतः। स्वहस्तेन समालम्ब्यानिनायेह शनैः शनैः[११] ॥२२॥
चक्षुर्भ्याञ्च विहीनोऽसौ चाऽस्मात्कुत्रापि नो गतः। काष्ठवत्पतितो विप्र ! तत्रैव धरणीतले ॥२३॥
गन्धर्वा ऋषयो नित्यमेतल्लिङ्गं सुरासुराः। स्तोत्रैर्गीतैरसेवन्त तालैर्नृत्यैर्मृदङ्गकैः[१२] ॥२४॥
तत्छब्दमशृणोच्छङ्कुः किञ्चिद् ज्ञानान्वितः पुनः। अब्रवीदनिशं सोऽपि चेदृशं नाम वै द्विज ॥२५॥
हे रुद्र भो महादेव ! सर्वभूतदयाकर। चक्षुर्हीनमनाथं मां रक्ष रक्ष सदाशिव ॥२६॥

---

हे विरूपाक्ष ! तिनीहरूले पनि उत्सव सकिनासाथ छिटो छिटो गएर शङ्कुलाई भेटे र तुरुन्तै त्यस उत्सवको सम्पूर्ण वृत्तान्त हृदयदेखि नै खोलेर बताए। तिनीहरूको वचन सुनेर शङ्कुले तुरुन्त जवाफ दियो– 'हामीहरूले त ऋषिहरूले शिवजीको पूजा गरेको देखेनौं'। यसरी मुनिहरूले महादेवको पूजा गरेको देखेर पनि उसले सरासर भूठो बोल्ने त्यो शङ्कु एकछिनपछि वनमा बसेका मृगलाई मार्न जङ्गलतिर लाग्यो। जङ्गलमा जनावरहरूलाई मारेर सूर्य अस्ताएपछि मासु लिएर त्यो शङ्कु घरतिर फर्कियो। त्यसका साथीहरू पनि शङ्कुलाई जङ्गलमा नदेखेर कतै गयो होला भन्दै त्यसलाई छोडेर आफ्नो घरतिर आए। जनावरको मासुको भारी बोकेर शङ्कु वनबाट बाहिर निस्कियो। महास्थलीको टकुरासम्म ऊ खुरुखुरु आइरहेको थियो ॥१३–१८॥

हे ब्राह्मण विरूपाक्ष ! त्यहाँ शिवलिङ्गको समीप आइनपुग्दै शङ्कुका दुवै आँखाको ज्योति बन्द भयो। त्यसबखत साँभ परिसकेको थियो। भारीसमेत बोकेको हुँदा ऊ एक पाइलो पनि हिँड्न सकेन। पहिले ऋषिहरूले रुद्रागारेश्वरलिङ्गको पूजा गरेको देख्दादेख्दै पनि देखिन भनेर उसले जुन भूठो बोल्यो, त्यसै पापले गर्दा त्यो अन्धो भयो। भारी बोकेको थकाइले गर्दा राति त्यो त्यसै ठाउँमा पल्टियो। आँखा तेजरहित भएका हुँदा उसले हेर्न सकेन। त्यहाँ कुनै मुनि आए। उसलाई देखेर उनको मनमा दया जाग्यो। उनले आफ्नो हातले समातेर शङ्कुलाई यहाँ ल्याए ॥१९–२२॥

हे विरूपाक्ष ! दृष्टिविहीन भएको त्यो शङ्कु त्यहाँबाट कतै पनि जान सकेन। त्यसै ठाउँमा काठजस्तै भएर लडिरह्यो। गन्धर्व, ऋषि, देवता र दानवहरूले स्तोत्र पाठ गरेर, गीता गाएर, मादल बजाएर, ताली बजाएर अनि विभिन्न नाँच नाँचेर यस लिङ्गको आराधना गरिरहेका थिए। शङ्कुले त्यो शब्द सुन्यो र उसलाई केही ज्ञान भयो। अनि उसले पनि यस्तै खालका नाम सधैं जप्न थाल्यो। सम्पूर्ण प्राणीलाई दया गर्ने हे रुद्र ! हे महादेव ! हे सदाशिव ! आँखा नभएको मलाई रक्षा गर्नुहोस् ॥२३–२६॥

---

४. प्रचक्षुः, इति न.सं.पु.पाठः।
५. न दृष्ट तम्, इति न.सं.पु.पाठः।
६. दृश्यमानेऽनृतोक्तकः, इति न.सं.पु.पाठः।
७. त्यज्य तद्, इति न.सं.पु.पाठः।
८. तावच्छङ्कोर्विहिनौ द्वौ तेजोभिलोचनौ द्विज, इति न.सं.पु.पाठः।
९. मांसभारसमाक्रान्ता सन्ध्यान्ते स्थगिता सृतिः, इति न.सं.पु.पाठः।
१०. तेजोविहीननेत्राभ्यान्नयनागोचरोऽभवत्, इति न.सं.पु.पाठः।
११. समालम्ब्य अत्रानीयत वै तदा, इति न.सं.पु.पाठः।
१२. स्तोत्रैर्गीर्मृदङ्गैश्च तालैर्नृत्यैरसेवयन्, इति न.सं.पु.पाठः

नेत्रे देहि महादेव ! येन सेवेय त्वां भुवि[१३] । ततस्त्वत्सेवकोऽहं त्वां न मोक्ष्यामि क्षणं विभो ॥२७॥
एवमुक्त्वा सदा शङ्कुर्बध्वाञ्जलिं ननाम हि । तदा लिङ्गान्तिकं गत्वा कराभ्यामस्पृशच्छनैः ॥२८॥
कार्त्तिकस्य चतुर्दश्यां घृताक्ते वर्त्तिके ददौ । शिखायुते च सन्ध्यायां याचमानो जनान् खलु[१४] ॥२९॥
स रात्रौ श्रुतवान्[१५] स्वप्ने चैकसंवत्सरान्तरे । रुद्रवाणीं ततः शङ्कुर्यतिरूपेरितां शिवाम् ॥३०॥
एतत्कुण्डजलेनाशु नेत्रे सम्मार्ज्य[१६] यत्नतः । दीपं ददासि लिङ्गाय दृग्भ्यां द्रक्ष्यसि तद्[१७] ध्रुवम् ॥३१॥
आकर्ण्य तद्वचः शङ्कुर्हर्षात्प्रफुल्लमानसः । लिङ्गस्य पूजकं कञ्चिदब्रवीदीदृशं वचः[१८] ॥३२॥
भो दातर्मे ह्यनाथाय नेत्रहीनाय तज्जलम् । एतत्कुण्डात्समानीय दीयतां मे कृपां कुरु ॥३३॥
लिङ्गमभ्यर्च्य विप्रोऽसौ धर्मदास इति श्रुतः । जलमादाय तत्कुण्डात्तस्मै मृत्पात्रके ददौ ॥३४॥
देहि स्वामिन्ननाथाय चेत्युक्त्वा मुमुदे तदा[१९] । प्रणम्य शिरसा भक्त्या तज्जलं पाणिनाग्रहीत् ॥३५॥
शिवेति शङ्करेत्युक्त्वा करस्थेन जलेन सः । अस्पृशल्लोचने चेति मत्वा सिद्धरसं हृदा ॥३६॥
उन्मील्य तदा शङ्कुरेतल्लिङ्गं ददर्श च । पुरतः समभिव्यक्तं स्मरणीयं महत्तरम्[२०] ॥३७॥
उन्मील्य लोचनं हृष्टः[२१] सुप्तोत्थितो यथा चिरम् । चतुर्दिक्षु ददर्शाशु लिङ्गसद्मानि सर्वतः ॥३८॥
ननाम स महाहर्षाद् लिङ्गं परिक्रमन्मुहुः । शिवाय शङ्करायेति नमो नम इति स्तुवन् ॥३९॥

---

हे महादेव ! मलाई दुईवटा आँखा दिनुहोस्, जसले गर्दा म हजुरको सेवा गर्न सकूँ। हे प्रभु ! त्यसपछि हजुरको सेवक भएर म एकछिन पनि हजुरलाई छोड्नेछैन। यति भनेर शङ्कुले अञ्जलि बाँधेर नमस्कार गऱ्यो। लिङ्गको नजिकै गएर बिस्तारै उसले हातले स्पर्श गऱ्यो। कार्तिक चतुर्दशीका दिन मानिसहरूसँग घिउमा भिजाएका दुई जोर बत्ती मागेर उसले सन्ध्याकालमा बाल्यो। त्यसै रातमा शङ्कुले एउटा सपनामा योगीको मुखबाट निस्किएको कल्याणकारक एक वर्षभित्र तैँले एउटा आँखो पाउनेछस् भन्ने वचन सुन्यो– हे शङ्कु ! यस कुण्डको जलले आफ्नो आँखा पखालेर यस लिङ्गलाई दीपदान गरिस् भने निश्चय नै तँ दुबै आँखाले हेर्न सक्ने हुनेछस् ॥॥२७–३१॥

यस्तो सपना देखेर शङ्कुको मन अत्यन्त प्रफुल्लित भयो। त्यस लिङ्गको पूजा गरिरहेको कुनै मानिसलाई उसले भन्यो– हे दाता ! मजस्तो आँखा नभएको अनाथलाई त्यस कुण्डबाट अलिकति जल ल्याएर दिनुहोस्, ममाथि कृपा गर्नुहोस्। यस्तो कुरा सुनेर धर्मदास नाम गरेको ब्राह्मणले लिङ्गको पूजा गरे, माटोको भाँडामा त्यस कुण्डबाट जल ल्याएर शङ्कुलाई दिए। शङ्कुले पनि 'हे स्वामी ! यस अनाथलाई त्यो पवित्र जल दिनुहोस्, दिनुहोस्' भनी अति प्रसन्न भएर धर्मदासलाई शिरले प्रणाम गरी त्यो जल हातमा लियो। अनि त्यस जललाई सिद्धरस सम्झेर खुसी हुँदै हे शिव ! हे शङ्कर ! भनेर हातमा रहेको जल आफ्नो दुबै आँखामा लगायो। त्यसपछि जब शङ्कुले आँखा उघाऱ्यो तब उसले आफ्ना अघिल्तिर अत्यन्त सुन्दर यस लिङ्गको स्पष्ट रूपमा दर्शन पायो। आँखा उघारेपछि शङ्कु धेरैबेर निदाएर उठेजस्तै गरी आँखा मिच्दै गर्दा उसले चारै दिशामा सबैतिर लिङ्गैलिङ्ग भएको देखी अत्यन्त प्रसन्न भयो। उसले नमः शिवाय, नमः शङ्कराय भनेर स्तुति गर्दै बारम्बार लिङ्गको परिक्रमा गऱ्यो र अत्यन्त हर्षित भएर त्यस लिङ्गलाई नमस्कार गऱ्यो ॥३२–३९॥

---

१३. जीवः सुखं हि मे, इति न.सं.पु.पाठः ।
१४. याच्यमानो जनान् खलु, इति न.सं.पु.पाठः ।
१५. तद्रात्रावलभत, इति न.सं.पु.पाठः ।
१६. संस्पर्श्य, इति न.सं.पु.पाठः ।
१७. दर्शिष्यसि, इति न.सं.पु.पाठः ।
१८. कञ्चिच्च पूजकं लिङ्गं चाब्रवीदीदृशं वचः, इति न.सं.पु.पाठः ।
१९. चेत्युक्त्वाशु मुमोद सः, इति न.सं.पु.पाठः ।
२०. पुरतो हि समव्यक्तं सुसुन्दरं महत्तरम्, इति न.सं.पु.पाठः ।
२१. मुमोद लोचनोन्मील्य, इति न.सं.पु.पाठः ।

आषाढपूर्णिमायां स शङ्कुश्च दिवसे[२२] पुनः । पुपूज[२३] पुष्पतोयैस्तद्विनाशनं विनिद्रकः ॥४०॥
एवं सम्पूजितं लिङ्गं शङ्कुना भक्तितोऽनिशम् । यावद्वत्सरमेकञ्च मुदा पञ्चोपचारकैः ॥४१॥
तत्पूर्णिमादिने रुद्रश्चैतल्लिङ्गाद् विनिर्गतः । वरं दातुं मुदा तस्मै तद्भक्तिभिः प्रतोषितः ॥४२॥
साधु साध्विति शङ्को वै गृहाण स्वायुधद्वयम्[२४] । त्रिशूलं डमरुं त्र्यक्षः ददौ तस्मै हरः स्वयम् ॥४३॥
इति दत्त्वा वरं तस्मै लिङ्गे तिरोदधे हरः । कृतार्थतां तदा मेने ततः शङ्कुः प्रहर्षितः ॥४४॥
ततो रुद्रगणा याने तमास्थाप्य विहायसा[२५] । निन्युः शिवपुरं भद्रं बहुमानपुरःसरम् ॥४५॥
सोऽप्यभवद् गणश्रेष्ठो वर्तिकायाः प्रदानतः[२६] । रुद्रस्याऽनुचरो नित्यं कोटिनागबलान्वितः ॥४६॥
रुद्रागारेश्वरं लिङ्गमाराधय विभूतिदम् । दीपदानेन रुद्रं तं[२७] भुक्तिमुक्तिफलप्रदम् ॥४७॥
अतो गच्छ विरूपाक्ष ! यत्र नागेशवासुकिः । सम्पूज्य प्रथमं भक्त्या[२८] नानालिङ्गानि सर्वतः ॥४८॥

अध्यायेऽस्मिन् गिरिशगुरुतां भक्तिभावार्द्रचित्ता
दीपज्वालोद्भवहरपशुपतिप्रोद्धृतम्लेच्छदेहाम् ।
ये शृण्वन्ति प्रवरमनुजाश्चैकचित्तं विधाय
यास्यन्त्यार्यागिरिशभवनं सर्वपापं विहाय ॥४९॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां
रुद्रागारेश्वरमाहात्म्यं नाम ऊनषष्ट्युत्तरशततमोऽध्यायः ॥१५९॥

---

फेरि अर्को वर्षको आषाढपूर्णिमाका दिन त्यस शङ्कुले निराहार बसेर जल, पुष्प आदिले पूजा गऱ्यो, रात्रीमा जागरण गऱ्यो । यसरी शङ्कुले एक वर्षसम्म पञ्चोपचार विधिले तत्पर भएर भक्तिपूर्वक सधैँ यस लिङ्गको पूजा गऱ्यो । त्यसै पूर्णिमाको दिन भगवान् शङ्कर उसको भक्तिबाट प्रसन्न भएर सहर्ष उसलाई वर दिन यसै लिङ्गबाट आविर्भाव हुनुभयो ॥४०-४२॥

हे शङ्कु ! तिमीलाई धन्यवाद छ ! यी दुईवटा अस्त्र धारण गर, भनेर त्रिनयन भगवान् शङ्कर आफैँले उसलाई त्रिशूल र डमरु दिनुभयो । यसरी शङ्कुलाई वर दिएपछि भगवान् शङ्कर त्यसै लिङ्गमा विलीन हुनुभयो । त्यसबखत शङ्कुले पनि खुसी हुँदै आफूलाई कृतार्थ सम्झियो । त्यसपछि शिवजीका गणहरूले यानमा त्यसलाई राखेर बडो सम्मानका साथ आकाशको बाटो गरी कल्याणदायक शिवपुरमा लगे । त्यो शङ्कु पनि दीपदान गरेको हुँदा करोडौँ हात्तीको बलले युक्त भएर रुद्रगणमा श्रेष्ठ हुनपुग्यो र शिवजीको सेवक भई बस्यो ॥४३-४६॥

हे विरूपाक्ष ! ऐश्वर्य तथा भुक्ति र मुक्ति दिने उज्यालो मन्दिरमा रहेको रुद्रागारेश्वर लिङ्गको आराधना गर र जहाँ नागराज वासुकि हुनुहुन्छ त्यस स्थानमा जाऊ । त्यहाँ चारैतिर लिङ्गहरू रहेका छन् । सर्वप्रथम तिमीले त्यहाँ वासुकिको पूजा गर ॥४७-४८॥

यस अध्यायमा भक्तिभावले एकचित्त भएर शङ्कुले दिएको दीपको ज्वालाबाट उत्पन्न म्लेच्छको शरीरलाई उद्धार गरेको भगवान् शङ्करको कथा वर्णित छ । जसले यो कथा भक्तिभावले एकचित्त भएर सुन्छन्, ती सबै सम्पूर्ण पापबाट मुक्त भएर शिव तथा पार्वतीको लोकमा जान्छन् ॥४९॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा रुद्रागारेश्वरको माहात्म्यनामक
एकसय उनन्साठिऔँ अध्याय पूरा भयो ।

---

२२. तद्दिने, इति न.सं.पु.पाठः ।
२३. सम्पूज्य, इति न.सं.पु.पाठः ।
२४. स्वायुधे इमे, इति न.सं.पु.पाठः ।
२५. स्वायुधे इमे, इति न.सं.पु.पाठः ।
२६. वर्तिकैकाप्रदानतः, इति न.सं.पु.पाठः ।
२७. प्रदीपमन्दिरं रुद्रम्, इति न.सं.पु.पाठः ।
२८. कार्यम्, इति न.सं.पु.पाठः ।

# षष्ट्युत्तरशततमोऽध्यायः

वासुकिवरप्रदानप्रसङ्गः

स्कन्द उवाच

सम्पूज्य विधिवत्सिद्धो लिङ्गानि सर्वशो मुने। नामधेयानि सिद्धर्षिमपृच्छत्तत्र तत्र च ॥१॥

विरूपाक्ष उवाच

चतुरधिकषष्टेश्च लिङ्गानां महिमा श्रुतः[1]। भवत्क्षेत्रोद्भवानां हि भवतश्च प्रसादतः ॥२॥

लिङ्गानां नामधेयानि शेषाणां भवतः प्रभो। अन्येषां श्रोतुमिच्छामि पृथक् पृथक् वद प्रभो ॥३॥

वासुकेर्नागराजस्य माहात्म्यञ्च तथा पुनः। महालिङ्गस्य सिद्धर्षे ! पशुपतेर्विशेषतः ॥४॥

सिद्धर्षिरुवाच

अयुतानि च कोटीनां लिङ्गानि सन्ति चाऽत्र वै। पाशुपते महाक्षेत्रे सर्वा लिङ्गमयी क्षितिः ॥५॥

तिलः पतति चैकोऽपि चैतत्क्षेत्रोपरि द्विज। लिङ्गस्योपरि सम्यग्वै तिष्ठति तत्तिलो दृढम् ॥६॥

सुकृतदुष्कृतान्यार्य ![2] पुंसामत्र कृतानि यत्। अक्षयानि च कल्पन्ते स्वर्गनरकदानि च[3] ॥७॥

नामधेयानि तेषान्ते कथं वक्ष्ये विरूपदृक्। मृत्तिकाच्छादितानाञ्च ह्यदृश्यानां रसान्तरे ॥८॥

गरिष्ठानाञ्च लिङ्गानां स्थापितानां सुरर्षिभिः। केषाञ्चन प्रमुखाणां वक्ष्ये नामानि सम्प्रति[4] ॥९॥

ब्रह्मेश्वरमिदं लिङ्गं ब्रह्मणा स्थापितं पुरा। पूजकानां सदा भक्त्या ब्रह्मलोकफलप्रदम् ॥१०॥

विष्ण्वीश्वरमिदं लिङ्गं विष्णुना स्थापितं पुरा। भक्त्या तदर्च्चकानाञ्च विष्णुलोकफलप्रदम् ॥११॥

---

## अध्याय – १६०

वासुकिलाई वरप्रदान गरिएको प्रसङ्ग

कार्तिक स्वामीले भन्नुभयो – हे मुनि ! ती सिद्ध विरूपाक्षले सबै लिङ्गको विधिपूर्वक पूजा गरे अनि ठाउँ–ठाउँमा रहेका लिङ्गको नाम नेमुनिसित सोधे ॥१॥

विरूपाक्षले भने – हे प्रभो ! हजुरका अनुग्रहबाट मैले चौसट्ठी लिङ्गको उत्पत्ति र हजुरको क्षेत्रमा रहेका अन्य लिङ्गहरूको माहात्म्य सुनें। हे प्रभो ! बाँकी रहेका अन्य लिङ्गका विषयमा पनि म हजुरबाट सुन्न चाहन्छु, अलग अलग गरेर सबै बताइदिनुहोस्। हे सिद्धर्षि ! नागराज वासुकिको माहात्म्य र विशेष गरी पशुपतिमहालिङ्गको माहात्म्य बताइदिनुहोस् ॥२–४॥

नेमुनिले भन्नुभयो – यस पशुपतिक्षेत्रमा करोडौं करोड लिङ्गहरू छन्। यहाँको सबै पृथ्वी लिङ्गमय छ। हे विरूपाक्ष ! यहाँ एउटा मात्रै तिल खस्यो भने पनि त्यो तिल लिङ्गमाथि अँठिलो भएर बसेको हुन्छ अर्थात् भूमिमा झरेको हुँदैन। यस क्षेत्रमा मानिसले स्वर्गदायक धर्म अथवा नरकका कारक पाप आदि जे जे कर्म गर्छन् ती सबै अक्षय हुन्छन् ॥५–८॥

हे विरूपाक्ष ! माटोले छोपिई पृथ्वीभित्र पुरिएर अदृश्य भएका ती लिङ्गहरूको नाम म तिमीलाई कसरी बताऊँ ? तीमध्ये देवता तथा ऋषिहरूले स्थापना गरेका, यहाँ रहेका महत्त्वपूर्ण लिङ्गहरूका केही नामहरू म बताउँछु, सुन। हे विरूपाक्ष ! भक्तिपूर्वक पूजा गर्ने व्यक्तिलाई सधैं ब्रह्मलोक प्राप्त गराउने यो ब्रह्मलिङ्ग ब्रह्माजीले स्थापना गर्नुभएको हो। श्रद्धाभक्तिपूर्वक अर्चना गर्ने भक्तलाई विष्णुलोक प्रदान गर्ने यो विष्णुलिङ्गलाई स्वयं भगवान् विष्णुले स्थापना गर्नभएको थियो ॥९–११॥

---

१. माहात्म्यञ्च श्रुतं विभो, इति न.सं.पु.पाठः। २. सुकृतकिल्विषाण्यार्य, इति न.सं.पु.पाठः।
३. तत्सर्वमक्षयं धर्माद् गच्छन्त्यन्ते त्रिविष्टपम्, इति न.सं.पु.पाठः।
४. तेषां नामान्यहं वक्ष्ये चात्रस्थानाञ्च स्वल्पिनाम्, इति न.सं.पु.पाठः।

उग्रेश्वरमिदं लिङ्गं स्थापितं शूलिना पुरा। भक्तेभ्यो वरदं साक्षाच्छिवलोकफलप्रदम् ॥१२॥
शक्रेश्वरमिदं लिङ्गं शक्रेण स्थापितं पुरा। लिङ्गार्चकः सदा भक्त्या चन्द्रलोके वसेत् सुखी ॥१३॥
अर्केश्वरमिदं लिङ्गं सूर्येण स्थापितं पुनः। सूर्यलोके वसेत्सौख्यं रवौ रवौ हि पूजकः ॥१४॥
चन्द्रेश्वरमिदं विद्धि सोमेन स्थापितं पुरा। लिङ्गार्चकः सदा भक्त्या चन्द्रलोके वसेत्सुखी ॥१५॥
अग्नीश्वरमिदं सिद्धञ्चाऽग्निना स्थापितं पुनः। लिङ्गार्चको नरो भक्त्या चाग्निलोके वसेत्सुखी ॥१६॥
कालेश्वरमिदं विद्धि यमेन स्थापितं पुरा। तत्राऽर्चकः सकृद्भक्त्या यमलोके वसेत्सुखी ॥१७॥
नैर्ऋत्येशमिदं विद्धि नैर्ऋत्येनाऽर्चितं मुदा। पूजया पूजकानाञ्च[५] स्वर्गलोकफलप्रदम् ॥१८॥
वरुणेशमिदं भूयः पाशिना स्थापितं पुरा। तत्र सुखी नरो याति वरुणलोकमर्चकः ॥१९॥
वायुना स्थापितञ्चेदं वायुलोकफलप्रदम्। वायुतुल्यबलोपेतो वायुलोकेऽर्चको वसेत् ॥२०॥
पौलस्त्येशमिदं लिङ्गं श्रीदेन स्थापितं पुरा। तदर्चको धनाध्यक्षः कुबेरस्य भवेद् प्रियः ॥२१॥
स्कन्देश्वरमिदं विद्धि स्कन्देन स्थापितं पुरा। स्कन्दलोके वसेच्चाऽस्य पूजको वै[६] महासुखम् ॥२२॥
गणेश्वरमिदं विद्धि हेरम्बेन तथाऽर्चितम्। गजाननस्य लोके स विघ्नं विहाय वै वसेत् ॥२३॥

---

यो उग्रेश्वर लिङ्ग हो। यसलाई अघि भगवान् शङ्करले स्थापना गर्नुभएको थियो। भक्तलाई इच्छा लागेको वर दिने साक्षात् यस शिवलिङ्गको आराधनाबाट शिवलोक प्राप्त हुन्छ। यो शक्रेश्वरलिङ्ग हो। यस लिङ्गलाई अघि इन्द्रले स्थापना गर्नुभएको थियो। भक्तिपूर्वक सधैँ यस लिङ्गको पूजा गर्ने व्यक्तिले आनन्दसित चन्द्रलोकमा बस्न पाउँछ। यो अर्केश्वरलिङ्ग हो। यसलाई अघि सूर्यले स्थापना गर्नुभएको थियो। प्रत्येक आइतबारका दिन यसको पूजा गऱ्यो भने त्यो व्यक्ति सुखका साथ सूर्यलोकमा बस्न पाउँछ। यो चन्द्रेश्वरलिङ्ग हो भनेर जान। यसलाई अघि चन्द्रमाले स्थापना गर्नुभएको थियो। यसको भक्तिपूर्वक पूजा गर्ने व्यक्ति चन्द्रलोकमा सधैँ सुखसाथ बस्न पाउँछ। यो अग्नीश्वलिङ्ग हो भनेर सिद्ध भएको छ। यसलाई अघि अग्निले स्थापना गर्नुभएको थियो। यस लिङ्गको भक्तिपूर्वक पूजा गर्ने मानिसले सुखसित अग्निलोकमा बस्न पाउँछ ॥१२–१६॥

यसलाई कालेश्वरलिङ्ग हो भनेर बुझ। यसको स्थापना अघि यमराजले गर्नुभएको थियो। एकपटक मात्र भए पनि भक्तिपूर्वक यस लिङ्गको आराधना गर्ने व्यक्तिले सुखसित यमलोकमा बस्न पाउँछ। यो नैर्ऋत्येश्वरलिङ्ग हो भनेर ठान। यसलाई स्थापना गरेर अघि नैर्ऋत्यले प्रसन्न भएर पूजा गर्नुभएको थियो। यस लिङ्गको आराधना गर्ने व्यक्तिका लागि यसले स्वर्गलोकको फल दिन्छ। यो लिङ्ग वरुणेश्वरलिङ्ग हो। यसलाई अघि वरुणले स्थापना गर्नुभएको थियो। यस लिङ्गको आराधना गर्ने व्यक्ति सुखी भएर वरुणलोकमा जान्छ। वायुलोक पुऱ्याउने यस पवनेश्वरलिङ्गलाई वायुले स्थापना गर्नुभएको हो। यस लिङ्गको आराधना गर्ने व्यक्ति वायुजस्तै बलियो भएर वायुलोकमा बस्न पाउँछ ॥१७–२०॥

पौलस्त्येश्वर नाम गरेको यस लिङ्गलाई अघि कुबेरले स्थापना गर्नुभएको थियो। यस लिङ्गको पूजा गर्ने व्यक्ति कुबेरको ढुकुटीको मालिक बन्न पाउँछ, यसमा सन्देह छैन। यो स्कन्देश्वरलिङ्ग हो भनेर बुझ। यसलाई अघि कार्तिकस्वामीले स्थापना गर्नुभएको थियो। यस लिङ्गको आराधना गर्ने व्यक्ति ठूलो सुख पाएर स्कन्दलोकमा बस्न पाउँछ। यो गणेश्वरको लिङ्ग हो भनेर जान। यसलाई गणेशले पूजा गर्नुभएको थियो। यसको आराधना गर्ने व्यक्ति सम्पूर्ण विघ्नबाट मुक्त भएर गणेशको लोकमा बस्न पाउँछ ॥२३॥

---

५. स्थापयेदर्चकानाञ्च, इति न.सं.पु.पाठः।

६. वसेच्चेदमर्चको वै, इति न.सं.पु.पाठः

विश्वेश्वरं महालिङ्गमिदं विद्धि विरूपदृक्। काश्यां यत्तत्कृतं कर्म लभेतैतत्प्रपूजनात्[७] ॥२४॥
आगत्यादौ हिमगिरितटं पुण्यभूमिञ्च मत्वा यावत्तेपे भृशमविरतं द्वादशाब्दं तपस्वी।
आराध्याजं पशुपतिविभुं देवदासस्य हेतोः संस्थाप्येदं सकलवरदं विश्वनाथस्य लिङ्गम्[८] ॥२५॥
विश्वनाथो मुदा भक्त्या पशुपतिं ननाम च। लब्ध्वा वरं परिक्रम्य तस्मात् काशीं मुदाऽव्रजत् ॥२६॥
तस्माद्विश्वेश्वरं लिङ्गं भुक्तिमुक्तिफलप्रदम्। काश्यां यत्सुकृतं सर्वमेतल्लिङ्गार्चनाद् भवेत्[९] ॥२७॥
केदारेशमिदं विद्धि केदारशूलिना पुरा। स्थापितमात्मनात्मानं भक्तानां[१०] मुक्तिदं शुभम् ॥२८॥
सिद्धेश्वरमिदं लिङ्गं सिद्धेश्वरेण वै मुदा। स्थापितं भक्तितो विप्र ! योगसिद्धिकरं ध्रुवम् ॥२९॥
नीलकण्ठेश्वरं लिङ्गं नीलकण्ठेन भक्तितः। स्थापितं पूजकानाञ्च सायुज्यवरदं परम् ॥३०॥
भद्रापदेश्वरं लिङ्गं रुद्रकोटीश्वरं तथा। अविमुक्तेश्वरं भूयो महाकालेश्वरं द्विज ॥३१॥
गोकर्णेशञ्च दीप्तीशं भद्रकर्णेश्वरं तथा। सुवर्णाक्षेश्वरं लिङ्गं स्थाण्वीश्वरमिदं पुनः ॥३२॥
छगलण्डेश्वरं लिङ्गं दुरण्डेशमिदं पुनः। माकोटेश्वरमाद्येशं मण्डलेश्वरमीश्वरम् ॥३३॥
कालञ्जरेश्वरं लिङ्गं शङ्कुकर्णेश्वरं परम्। स्थलेश्वरं महालिङ्गं स्थूलेश्वरमिदं परम् ॥३४॥
श्रीपर्वतेश्वरं लिङ्गं हरिश्चन्द्रेश्वरं तथा। आम्रातकेश्वरं विद्धि चाल्पेश्वरमिदं द्विज ॥३५॥

---

हे विरूपाक्ष ! यो विश्वेश्वर लिङ्ग हो भन्ने कुरा तिमी बुझ। काशीमा कर्म गर्दा जुन पुण्य फल प्राप्त हुन्छ, त्यही फल यस लिङ्गको पूजनबाट प्राप्त हुन्छ। पहिले विश्वनाथ यस हिमालय–पर्वतखण्डलाई पवित्र ठानेर यहाँ आउनुभयो र उहाँले बाह्र वर्षसम्म अविच्छिन्न रूपले खूबसित तपस्या गर्नुभयो। अजन्मा व्यापक पशुपतिनाथको आराधना गरी देवदासका लागि सम्पूर्ण लोकलाई वर दिने यस लिङ्गको स्थापना गर्नुभयो। विश्वनाथले आनन्दपूर्वक सभक्ति पशुपतिनाथलाई नमस्कार गर्नुभयो। उहाँबाट वर प्राप्त गरेर विश्वनाथ परिक्रमा गरी सहर्ष काशी जानुभयो। त्यसैले यसलाई विश्वेश्वर लिङ्ग भनिएको हो। यसबाट भुक्ति तथा मुक्ति दुबैथरी फल प्राप्त हुन्छ। काशीमा कर्म गर्नाले जुन फल प्राप्त हुन्छ त्यो फल यस लिङ्गको पूजामात्रै गर्नाले प्राप्त हुन्छ ॥२४–२७॥

हे विरूपाक्ष ! यो केदारेश्वरलिङ्ग हो भनेर बुझ। अघि केदार नाम गरेका भगवान् शङ्कर आफैँले आफ्नै लागि यसको स्थापना गर्नुभएको थियो। यसको भक्ति गर्ने व्यक्तिहरूले कल्याणमय मुक्ति प्राप्त गर्दछन्। यो सिद्धेश्वरलिङ्ग हो। यसलाई प्रसन्न भएर सिद्धेश्वरले स्थापना गर्नुभएको थियो। भक्तिपूर्वक यसको आराधना गर्ने व्यक्तिलाई यसले अवश्य योगसिद्धि प्रदान गर्छ। यो नीलकण्ठेश्वरलिङ्गलाई नीलकण्ठमहादेवले भक्तिपूर्वक स्थापना गर्नुभएको थियो। यसको पूजा गर्ने व्यक्तिलाई यसले उत्तम सायुज्य पद अर्थात् मुक्ति वर प्रदान गर्दछ ॥२८–३०॥

हे विरूपाक्ष ! यो भद्रापदेश्वरलिङ्ग हो, यो रुद्रकोटीश्वरलिङ्ग हो, यो अविमुक्तेश्वरलिङ्ग हो र यो महाकालेश्वरलिङ्ग हो। यो गोकर्णेश्वरलिङ्ग हो, यो दीप्तीश्वरलिङ्ग हो। त्यस्तै यो भद्रकर्णेश्वरलिङ्ग हो, यो सुवर्णाक्षेश्वरलिङ्ग हो, फेरि यो स्थाण्वीश्वरलिङ्ग हो। यो छगलण्डेश्वरलिङ्ग हो। फेरि यो दुरण्डेश्वरलिङ्ग हो। यो महाकोटेश्वरलिङ्ग हो, यो आद्येश्वरलिङ्ग हो, यो मण्डलेश्वर नाम गरेको भगवान् ईश्वरको लिङ्ग हो। यो कालञ्जरेश्वरलिङ्ग हो, अर्को शङ्कुकर्णेश्वरलिङ्ग हो। यो स्थलेश्वरमहालिङ्ग हो, अर्को स्थूलेश्वरलिङ्ग हो। यो पर्वतेश्वरलिङ्ग हो, त्यस्तै यो हरिश्चन्द्रेश्वरलिङ्ग हो। यसलाई आम्रातकेश्वरलिङ्ग भनेर बुझ। हे विरूपाक्ष ! यो अल्पेश्वर भगवान्को लिङ्ग हो ॥३१–३५॥

---

७. लभेतैत्स्पृशाद्धि तत्, इति न.सं.पु.पाठः।
८. स्थाप्यात्रेदं सकलवरदं विश्वनाथो हि लिङ्गम्, इति न.सं.पु.पाठः।
९. सर्वमेतल्लिङ्गं प्रशाल्लभेत्, इति न.सं.पु.पाठः।
१० भक्तिनाम्, इति न.सं.पु.पाठः।

आम्रेश्वरं महालिङ्गमाषाढीशं परन्त्विदम्। भालेश्वरञ्च चण्डीशं मुण्डीशं भूतिदं तथा ॥३६॥
भवान्तकेश्वरं लिङ्गं नकुलीशमिदं ततः। ज्योतिर्लिङ्गेश्वरं विद्धि कुण्डानि शृणु वच्मि ते ॥३७॥
योगकुण्डं कुरुक्षेत्रं कुण्डं नखलविश्रुतम्। कनखलं महाकुण्डं तत्कुण्डं विमलोदकम् ॥३८॥
महेन्द्राख्यमिदं कुण्डं भीमकुण्डमिदं पुनः। प्रयागाख्यं महाकुण्डं गङ्गासागरविश्रुतम् ॥३९॥
प्राभासं नैमिषं कुण्डं ब्रह्मकुण्डं हरस्य च। हारिद्वारं महाकुण्डं विष्णुकुण्डमिदं महत् ॥४०॥
स्कन्दतीर्थं महाकुण्डञ्चागस्त्यकुण्डमाश्रुतम्। सप्तर्षीणां महाकुण्डं सनकानां तथापरम् ॥४१॥
अगस्त्येशमिदं लिङ्गं व्यासेश्वरमिदं द्विज। मामकीयमिदं लिङ्गं यतो लब्धो महान् वरः[११] ॥४२॥
ग्रहेश्वराणि लिङ्गानि स्थापितानि नवग्रहैः। तद्दिने पूजनात्तेषां[१२] ग्रहशान्तिर्भवेद् भृशम् ॥४३॥
सप्तर्षीणाञ्च लिङ्गानि चैतानि स्थापितानि तैः। सप्तर्षीणां हि लोके स तत्पूजको वसेत्सुखी ॥४४॥
लिङ्गान्येतानि भक्तेभ्यो ददति चेप्सितानि वै। अन्येषाञ्चैव लिङ्गानि तथाविधं विरूपदृक् ॥४५॥
वासुकिर्नागराजोऽसौ तप्तवान् स पुरा तपः[१३]। तार्क्ष्यभयादिहागत्य वाग्वत्या जीवनाप्लवः[१४] ॥४६॥
पशुपतिं समाराध्य वाक्कायमानसैरिह। सहस्राब्दं मुदा व्याप्य भक्त्या तन्नाम संस्मरन् ॥४७॥
कार्त्तिक्यां पूर्णिमायाञ्च साक्षात्पशुपतिर्विभुः। व्यक्तीकृत्य तनुं तस्मै वरं दातुमुवाच हि ॥४८॥

---

यो आम्रेश्वरमहालिङ्ग हो, यो चाँहि आषाढीश्वरलिङ्ग हो। त्यस्तै यो लिङ्ग भालेश्वर हो, यो चण्डीश्वरहो, यो लिङ्ग मुण्डीश्वर हो र यो लिङ्ग भूतीश्वर हो। यो लिङ्ग भवान्तकेश्वर हो। त्यसभन्दा पछिल्लो लिङ्ग नकुलीश्वरलिङ्ग हो। यस लिङ्गलाई ज्योतिर्लिङ्गेश्वर भनेर बुझ। अब म कुण्डका बारेमा तिमीलाई बताउँछु, सुन ॥३६-३७॥

यो योगकुण्ड हो, यो कुरुक्षेत्रकुण्ड हो। यो प्रसिद्ध कनखलकुण्ड हो। यो कनखल नाम गरेको निर्मल जलयुक्त महाकुण्ड हो। यो कुण्ड महेन्द्रकुण्ड हो, फेरि यो भीमकुण्ड हो। यो गङ्गासागरको नामले प्रसिद्ध भएको प्रयागमहाकुण्ड हो। यो प्रभास कुण्ड हो, यो नैमिषकुण्ड हो। यो शिवजीको ब्रह्मकुण्ड हो। यो हरिद्वारनाम गरेको महाकुण्ड हो। यो ठूलो कुण्ड विष्णुकुण्ड हो। यो अगस्त्यकुण्डको नामले प्रसिद्ध भएको महाकुण्ड स्कन्दतीर्थ हो। त्यस्तै अर्को सप्तर्षिहरूको महाकुण्ड छ। यो सनक आदि गरिएका ऋषिहरूको कुण्ड हो। यो अगस्त्येश्वर लिङ्ग हो। हे विरूपाक्ष ! यसलाई व्यासेश्वरलिङ्ग भन्छन्। यो मैले बनाएको शिवलिङ्ग हो। यसबाट ठूलो वर प्राप्त हुन्छ ॥३८-४२॥

यी लिङ्गहरू नवग्रहले बनाएका लिङ्ग हुन्। ग्रहहरूका आ-आफ्ना वारहरूमा यी लिङ्गको आराधना गर्ने व्यक्तिलाई ग्रहको पीडाबाट तुरुन्त शान्ति मिल्छ। यी सप्तर्षिका लिङ्ग हुन्। यी लिङ्गलाई सप्तर्षिहरूले नै स्थापना गरेका थिए। यी लिङ्गको पूजा गर्ने व्यक्तिले सप्तर्षिको लोकमा गएर आनन्दसित बस्न पाउँछ। हे विरूपाक्ष ! यी लिङ्गहरूले भक्तहरूलाई इच्छा लागेको फल प्रदान गर्छन्। अन्य लिङ्गहरूले पनि त्यस्तै खालको फल दिन्छन्। यी नागका राजा वासुकि हुन्। अघि यिनले गरुडको डरले यहाँ आएर वाग्वतीको जलमा स्नान गरी ठूलो तपस्या गरेका थिए। वचन, शरीर र मनले हजार वर्षसम्म पशुपतिको आराधना गरेर भक्तिपूर्वक उनले शिवजीको मन्त्र जपेका थिए। कार्तिक पूर्णिमाको दिन साक्षात् पशुपति प्रकट भएर तिनलाई वर दिनका लागि भन्नुभएको थियो ॥४३-४८॥

---

११. लब्धं महद्वरम्, इति न.सं.पु.पाठः।
१२. अर्चति तस्याशु, इति न.सं.पु.पाठः।
१३. पुरा तप्तो महत्तपः, इति न.सं.पु.पाठः।
१४. जीवनाप्लुतः, इति न.सं.पु.पाठः।

श्रीपशुपतिरुवाच

शृणु दास्ये वरं तुभ्यं नागराज महातपाः। आराधितस्त्वया यस्मात्[१५] त्रिविधैस्तोषितोऽनिशम् ॥४९॥

यस्मात्स्मरसि मां नित्यं हृदयस्थञ्च कण्ठतः। कण्ठस्य भूषणं मे त्वं भविता नागराट् सदा ॥५०॥

अपरं रक्षको भूत्वा तिष्ठ नाग ! मदन्तिके। द्वारं निधिं मम क्षेत्रं सर्वकालं प्ररक्षयन् ॥५१॥

प्रथमं न नमस्कृत्य त्वां मद्द्वारि नराधमः। यः प्रविशति मां द्रष्टुं निष्फलार्थो भवेन्नरः ॥५२॥

त्वां पश्य मां प्रपश्यन्ति नरास्ते क्षीणकिल्विषाः। तेभ्यो ददाम्यहं नाग ! भुक्तिं मुक्तिं हृदेप्सितान् ॥५३॥

अधुनाऽलङ्कुरु स्पष्टमुरोदेशं ममोरग ![१६] सर्वभूषोन्नता श्रीस्ते भविता मत्प्रसादतः ॥५४॥

नेमुनिरुवाच

इत्युक्त्वा भूषयामास स्वात्मानं सहसा मुदा। धृत्वा पाणिद्वयेनाऽसौ शिवः कण्ठे निधाय च[१७] ॥५५॥

नमन्ति सर्वलोकास्तं सशङ्करञ्च वासुकिम्। हराङ्गभूषणोद्योतं तदारभ्य निरन्तरम्[१८] ॥५६॥

ततः पशुपतिः क्षेत्रनन्दिभृङ्गिगजाननान्। हार्देन तान् समाहूय चेदं वचनमब्रवीत् ॥५७॥

श्रीपशुपतिरुवाच

भो लम्बोदर ! भो क्षेत्र नन्दिभृङ्गिदिशां वराः। यूयं रक्षथ मत्क्षेत्रं स्थित्वा द्वारेषु सन्ततम् ॥५८॥

युष्मान्न दृष्ट्वा ये मर्त्याश्चायान्ति च मदन्तिकम्। विघ्नं ददत यूयं वै तेभ्यो देवाः पदे पदे ॥५९॥

प्रणम्य गौरवाद्युष्मान् मां प्रपश्यन्ति ये नराः। गमिष्यन्ति च मे लोकं हित्वा पशुकलेवरम् ॥६०॥

---

पशुपतिले भन्नुभयो – हे नागराज ! हे महातपस्वी ! तिमीले तीनै किसिमका भक्तिद्वारा मेरो आराधना गर्‍यौ, मलाई सन्तुष्ट तुल्यायौ, म तिमीलाई वर दिन्छु। तिमीले हृदयमा अवस्थित मलाई कण्ठद्वारा सम्झना गर्‍यौ अर्थात् जप्यौ। त्यसैले हे नागराट् ! सधैँ तिमी मेरो कण्ठको गहना हुनेछौ। अर्को फेरि के भन्छु भने हे नाग ! तिमीले मेरो ढोका, सम्पत्ति र क्षेत्रलाई सधैँ रक्षा गरेर मेरो नजिकै बस ॥४९–५१॥

जुन अधम मानिसले मेरो ढोकामा आएर पहिले तिमीलाई नढोगीकन मेरो दर्शनका लागि प्रवेश गर्छ भने त्यसको प्रयोजन निष्फल हुनेछ। हे वासुकि ! तिम्रो दर्शन गरेर जसले मेरो दर्शन गर्छन्, ती मानिसहरू पापबाट मुक्त हुनेछन्। हे वासुकि ! तिनीहरूलाई म भुक्ति, मुक्ति र उनीहरूले चिताएको फल दिनेछु। हे नाग ! तिमी अब मेरो कण्ठलाई विभूषित तुल्याऊ, मेरो कृपाले गर्दा तिमी सबै गहनामध्ये चम्किलो गहना बन्नेछौ ॥५२–५४॥

नेमुनिले भन्नुभयो – यति भनेर भगवान् शङ्करले आफ्नो हातले वासुकिलाई समातेर तुरुन्त प्रसन्न हुँदै कण्ठमा अलङ्कारका रूपमा लगाउनुभयो। त्यसै समयदेखि सबै मानिसहरूले भगवान् शङ्करको गहना बन्न पुगेका वासुकिसहित शङ्करलाई नमस्कार गर्छन्। त्यसपछि भगवान् शङ्करले क्षेत्रपाल, नन्दी, भृङ्गी र गणेशलाई बोलाएर हृदयदेखि नै यस्तो कुरा भन्नुभयो ॥५५–५७॥

पशुपतिले भन्नुभयो – हे लम्बोदर ! हे क्षेत्रपाल ! हे नन्दी ! हे भृङ्गी ! हे दिक्पाल हो ! मेरो ढोकामा बसेर तिमीहरूले मेरो रक्षा गर। हे देवता हो ! तिमीहरूको दर्शन नगरीकन जो मानिसहरू मेरो दर्शनका लागि नजिक आउँछन्, तिनीहरूलाई पाइलैपिच्छे तिमीहरूले विघ्न पार। तिमीहरूको दर्शन गरेर जो मानिसहरूले मेरो दर्शन गर्छन्, ती मानिसहरू अज्ञामय मानवशरीरबाट मुक्त भएर मेरो लोक जान्छन्। एकपटक मात्रै भए पनि जसले मेरो दर्शन गर्छ त्यो मानिस पशुजन्मबाट मुक्त हुन्छ। सम्पूर्ण जन्ममा गरेका पापबाट मुक्त भएर मेरो लोकमा जान्छ ॥५८–६१॥

---

१५. यस्मादाराधितं माञ्च, इति न.सं.पु.पाठः।
१६. भूषय मेऽधुनाऽहं त्वामुरोदेशं ममोरग, इति न.सं.पु.पाठः।
१७. वासुकिना ह्युरोदेशे कराभ्यां धृत्य शङ्करः, इति न.सं.पु.पाठः।
१८. ततः प्रभृति चाद्यतः, इति न.सं.पु.पाठः।

सकृत्पश्यति यो मां हि मुक्तश्च पशुजन्मतः । सर्वजन्मार्जितैः पापैर्निर्मुक्तो याति मे पुरम् ॥६१॥
मां सत्कृत्य च यो भक्त्या पश्यति त्रिविधैश्च माम् । पुनर्जन्म परित्यज्य मम लोके महीयते ॥६२॥
मदर्चनैः स्तवैर्यो मां जाप्यैः पश्यति भक्तितः । स्वकुलानि समुद्धृत्य स योगी मयि लीयते ॥६३॥

सिद्धर्षिरुवाच

इत्युक्त्वाऽन्तर्दधे लिङ्गे साक्षात्पशुपतिर्विभुः । तस्थुर्द्वारिषु ते देवाः सर्वकालं सुरक्षया[१९] ॥६४॥
तस्मात्प्राक् वासुकिं भक्त्या पूजयित्वा[२०] विचक्षणैः । कार्या पशुपतेः पूजा जीवनं सार्थकं भवेत् ॥६५॥

माहात्म्यं ये सुकृततनवो वासुकेर्नागराजः
चाऽध्यायेऽस्मिन्विगतदुरिता धीर शृण्वन्ति भक्त्या ।
यान्ति त्यक्त्वा परकृतभयं जन्मसम्भूतपापं
सर्वागम्यं परशिवपुरं सान्वयं मोदमुग्धाः[२१] ॥६६॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां वासुकिवरप्रदानं नाम षष्ट्युत्तरशततमोऽध्यायः ॥१६०॥

---

जसले तीनै किसिमका भक्ति लगाएर सत्कारपूर्वक मेरो दर्शन गर्छ त्यसले पुनर्जन्म लिनुपर्दैन, मेरो लोकमा ससम्मान रहन पाउँछ। जसले पूजा, स्तुति र जप गरेर भक्तिपूर्वक मेरो दर्शन गर्छ त्यो योगी आफ्नो कुलको उद्धार गरेर ममा नै लीन हुन पाउँछ ॥६३॥

नेमुनिले भन्नुभयो – यति भनेर भगवान् साक्षात् पशुपति लिङ्गमा विलीन हुनुभयो। देवताहरू सधैँ सुरक्षाका लागि त्यहीँ द्वारमा बसे। त्यसैले बुद्धिमान् मानिसहरूले पाशुपक्षेत्रमा गएपछि सर्वप्रथम भक्तिपूर्वक नागराज वासुकिको पूजा गरेर मात्रै भगवान् पशुपनिाथको दर्शन, पूजाआजा गर्नुपर्दछ। यसरी गरिने कर्मबाट मात्रै पशुपतिनाको दर्शन र पूजा गरेको फल मिल्नेछ र जीवन सार्थक बन्नेछ ॥६४–६५

पुण्य शरीर भएका जो मानिसहरूले यस अध्यायमा वर्णन गरिएको नागराज वासुकिको माहात्म्य भक्तिपूर्वक सुन्छन्, तिनीहरू संसारमा लागेका पाप र अर्काबाट हुने डरबाट मुक्त भएर कसैले पनि जान्न नसकिने उत्तम शिवलोकमा प्रसन्न हुँदै सपरिवार जान्छन् ॥६६॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा वासुकिलाई भगवान् शिवद्वारा वरप्रदाननामक एकसय साठिऔँ अध्याय पूरा भयो।

---

१९. प्ररक्षयन्, इति न.सं.पु.पाठः।
२०. प्रणम्यार्च्य, इति न.सं.पु.पाठः।
२१. हर्षवन्तः, इति न.सं.पु.पाठः।

# एकषष्ट्युत्तरशततमोऽध्यायः

## सिद्धेश्वरशिवलिङ्गमाहात्म्यम्

### सिद्धर्षिरुवाच

स्कन्देनैवं यदुक्तं मे दिव्यं वृत्तान्तमैश्वरम्। वक्ष्यामि ते हि तत् सर्वं शृणुष्वैकाग्रमानसः ॥१॥
पशुपतेश्च माहात्म्यमधुना तच्छृणु द्विज। पुरोद्भूतञ्च संवादं देवीशङ्करयोर्हि तम् ॥२॥

### देव्युवाच

शान्ताय शान्तरूपाय पशूनां पतये नमः। पञ्चात्मकाय देवाय पञ्चास्यव्यक्तये नमः ॥३॥
भगवन् देवदेवेश पञ्चभूतविधायक। यदुक्तं जन्तवः सर्वे लीयन्ते कर्मभिः कथम् ॥४॥
भवदंशाश्च ये देवाः ब्रह्मादयो दशात्मकाः। क्षये कुत्र विलीयन्ते कर्मपाशैर्विवर्जिताः ॥५॥
ब्रह्मा विष्णुर्गणो दुर्गा सोमः सूर्यो जलोऽनिलः। भूरग्निमूर्तयो हीमा इत्युक्तं भवता च मे ॥६॥
मा जानीहि कदाप्यन्यान् देवान् दशात्मकानिमान्[1]।
मन्मूर्तीश्चाऽनिशं विद्यादिमान् मदात्मकान् प्रिये[2] ॥७॥
इत्युक्तञ्च पुरा देव ! भवता मेऽनुकम्पया। श्रोतुमिच्छामि तद्देवा लीयन्ते चैव कुत्र वा ॥८॥

### सिद्धर्षिरुवाच

आकर्ण्य वचनं देव्याः पशुपतिर्विरूपदृक्। मुमुदे च भृशं तस्यै शङ्करो लोकशङ्करः ॥९॥
पृच्छ्यमानो हरश्चैवं देव्या चाऽत्रैव भक्तितः। व्याजहाराशु यत्पृष्टं तत्सर्वं खलु हर्षवान् ॥१०॥

---

## अध्याय – १६१

### सिद्धेश्वर शिवलिङ्गको माहात्म्य

नेमुनिले भन्नुभयो – अघि कार्तिक स्वामीले बताउनुभएको दिव्य ईश्वरीय वृत्तान्त सबै तिमीलाई म सुनाउँछु, एकाग्रचित्त भएर सुन। हे विरूपाक्ष ! पशुपतिको माहात्म्यसँग सम्बद्ध पार्वती र शङ्करको बीचमा अघि भएको संवाद पनि बताउँछु, अब सुन ॥१–२॥

देवीले भन्नुभयो – शान्तरूप लिने शान्तस्वरूप पशुपतिलाई नमस्कार छ। पाँच आत्मा भएका पाँचवटा मुखबाट प्रकट हुने देवतालाई नमस्कार छ। हे देवताका पनि देवता ! पञ्चमहाभूतका निर्माता हे भगवन्! सृष्टि गरेका सबै प्राणीहरू आफ्नै कर्मका कारणमा लीन हुन्छन्, कसरी ? हे भगवन् ! हजुरको अंशबाट उत्पन्न भएका जुन देवता, ब्रह्मा आदि गरिएका दश दिक्पाल छन्, तिनीहरू कर्मपाशबाट मुक्त भएर प्रलयकालमा कहाँ लीन हुन्छन् ? ब्रह्मा, विष्णु, गणेश, दुर्गा, सोम, जल, वायु, पृथ्वी र अग्नि, यी सबै मूर्ति मेरा हुन् भनेर हजुरले मलाई भन्नुभएको थियो। हे प्रिय ! यी दश देवतालाई कहिल्यै पनि मदेखि भिन्न नसम्झ। यी मेरै अंशबाट भएका मेरै मूर्ति हुन् भनेर ठान। हजुरले ममाथि कृपा गरेर अघि यस्तो भन्नुभएको थियो। ती देवताहरू कहाँ विलीन हुन्छन् ? यो कुरा म सुन्न चाहन्छु ॥३–८॥

नेमुनिले भन्नुभयो – हे विरूपाक्ष ! पार्वतीको यस्तो वचन सुनेर लोकका कल्याणकारी भगवान् शङ्कर उमासँग अत्यन्त खुसी हुनुभयो। पार्वतीले भक्तिपूर्वक यस्तो कुरा सोधेपछि प्रसन्न हुँदै भगवान् शङ्करले तुरुन्तै भगवती पार्वतीले सोधेका प्रश्नको जवाफ दिनुभयो ॥९–१०॥

---

१. कदाप्यन्यदेवा इमे दशात्मकाः, इति न.सं.पु.पाठः। २ मन्मूर्तयोऽनिशं विद्यान्ममात्मका इमे प्रिये, इति न.सं.पु.पाठः।

पशुपतिरुवाच

एवमेव महादेवि मम ते मूर्त्तयोऽमराः। यदुक्तञ्च त्वया चाऽत्र सत्यमेतन्न संशयः ॥११॥
आवयोर्मूर्त्तयः सर्व अजादयो भवानि ते। नोऽपि चेदात्मनो ह्यंशाः सतो भवा हि तेऽसतः ॥१२॥
ब्रह्माऽहमच्युतोऽहञ्च गणेशोऽहं तथानिलः। सोमः सूर्योऽनलो दुर्गा जलं भूमिरहं तथा[3] ॥१३॥
द्यौरहं यजमानोऽहं यज्ञरूपोऽहमीश्वरः। मन्त्रोऽहं खलुभोक्ताहं हवनीयञ्च भोज्यकम् ॥१४॥
मनो बुद्धिरहं चित्तं[4] गर्वो जीवस्तथाश्रितः। आनन्दोऽहं जगत्सर्वं तद्रूपैर्जृम्भयाम्यहम् ॥१५॥
मदेव सकलं जातं मयि सर्वं प्रतिष्ठितम्। मयि सर्वं लयं याति तद् ब्रह्माऽस्म्यहमव्ययम् ॥१६॥
पश्य देवि त्विदानीं ते विलीयन्तेऽमरा मयि। यतो यतः पुरोद्भूतास्तस्मिँस्तस्मिँस्तनौ मम ॥१७॥

सिद्धर्षिरुवाच

इत्युक्त्वाशु महादेवीं विरराम महेश्वरः। पञ्चात्मकं महालिङ्गं तस्थौ स्थावरवद्यथा ॥१८॥
भवानीं दर्शयन् स्वस्मिन्[5] तत्क्षणे च प्रवेशिताम्। ज्योतिर्मयं महालिङ्गं तस्थौ तदेवमेव च ॥१९॥
आददे मूर्त्तितो देवान् पशुपतिः स्वकीयकान्। दीपशिखेव तैलानि वर्त्तिकातः शनैः शनैः ॥२०॥
ऊर्ध्वे चैशानवक्त्रे सोऽलीयत भगवान् रविः[6]। प्रदोषेऽस्ताचले व्योम्नः स्वभाभिर्द्योतयञ्जगत् ॥२१॥
सोमोऽपि च तथा तत्र भाभिर्विद्योतयञ्जगत्। नक्षत्राणां गणैः सार्द्धं ज्वालाजाले ह्यलीयत[7] ॥२२॥

---

पशुपतिनाथले भन्नुभयो – हे पार्वती ! यी माथि बताइएका मूर्तिहरू सबै मेरा हुन्। तिमीले जे कुरा भन्यौ, त्यो कुरा सत्य छ, यसमा सन्देह छैन। हे भवानी ! यी ब्रह्मा आदि देवताहरू हामी दुईका अंश हुन्। यिनलाई हाम्रो अंश नमाने पनि सत्स्वरूप भएका यी देवताहरूलाई अनादिको अंश त मान्नैपर्छ। ब्रह्मा भनेको म नै हुँ, विष्णु म नै हुँ, गणेश म नै हुँ, वायु मै हुँ। चन्द्रमा, सूर्य, अग्नि, दुर्गा, पृथ्वी र जल भनेको मै हुँ, अर्को कुरा छैन। आकाश भनेको म हुँ, म यजमान हुँ, यज्ञरूप पनि मै हुँ, म ईश्वर हुँ, म मन्त्र हुँ, म भोक्ता हुँ, हवनीय पनि मै हुँ र भोज्य पनि मै हुँ। मन भनेको मै हुँ, म बुद्धि पनि हुँ, मै चित्त हुँ, जीवमा रहेको घमण्ड भनेको मै हुँ, मै आनन्द हुँ। त्यही आनन्द रूप लिएर जगत्लाई मैले व्याप्त गरेको छु। मबाट नै सम्पूर्ण जगत्को सृष्टि भएको छ। ममाथि नै सम्पूर्ण संसार अडिएको छ। ममा नै सबै विलय हुन्छ। त्यसैले म ब्रह्मा हुँ र म अव्यय हुँ। हे देवी ! अब सबै देवताहरू अघि मेरो शरीरमा जुन जुन ठाउँबाट पैदा भएका थिए अहिले ती सबै मेरो शरीरका तिनै तिनै स्थानमा विलीन हुँदैछन्, लौ हेर ॥११-१७॥

नेमुनिले भन्नुभयो – पार्वतीलाई यति कुरा भनेर भगवान् शङ्कर चुप लाग्नुभयो। महालिङ्गस्वरूप भगवान् शङ्कर स्थावरजस्तै भएर रहनुभयो। महालिङ्गस्वरूपका भगवान् शङ्करले आफ्नै सामु पार्वती तत्कालै आफ्नो महालिङ्गमा विलीन हुँदै गरेको दृश्य देखाउनुभयो। त्यो ज्योतिर्मय महालिङ्ग अन्त्यमा जस्ताको तस्तै रह्यो ॥१८-१९॥

पशुपतिनाथले बत्तीको ज्वालाले तेजलाई सोसेजस्तै गरी आफ्ना अवयव भएका सबै देवताहरूलाई शोषण गरेर बिस्तारै आफैँमा विलीन गराउनुभयो। पाँच मुखमध्ये सबैभन्दा माथि रहेको ईशान वक्त्रमा अस्ताउन लागेका सूर्यले अस्ताचलबाट संसारलाई प्रकाशमय तुल्याइराखेको आफ्नो किरणको समूहलाई आफैँमा विलीन गराएजस्तै गरी सूर्यलाई विलीन गराउनुभयो। आफ्ना किरणद्वारा संसारलाई प्रकाशित तुल्याउने चन्द्रमा पनि तारागणहरूका साथ ठूलो ज्योतिर्लिङ्गमा विलीन भए ॥२०-२२॥

---

३. भूर्जलोऽहं तथापरः, इति न.सं.पु.पाठः
४. मनोऽहं बुद्ध्यहं चित्तः, इति न.सं.पु.पाठः।
५. दर्शयन् स्वे भवानीन्ताम्, इति न.सं.पु.पाठः।
६. वै चालीलियद्रविर्यथा, इति न.सं.पु.पाठः।
७. ज्वालकीलमलीयत, इति न.सं.पु.पाठः।

अलीयत ततो[८] ब्रह्मा प्राच्ये तत्पुरुषानने। शक्त्या युक्तोऽहि लिङ्गस्य देवानपि प्रदर्शयन् ॥२३॥
याम्येऽघोरानने विष्णुः पशुपतेरवीविशत्। ज्वालामये महावह्नौ चाऽस्मिँल्लिङ्गे तथानलः ॥२४॥
सद्योजाताननेऽवाच्यां लम्बोदरो ह्यवीविशत्। प्रभञ्जनस्तथा सद्यः क्षयानले यथा जगत् ॥२५॥
पशुपतौ महालिङ्गे प्रेक्ष्याविष्टान् सुरानपि[९]। साऽभूद्देवी सुचित्रात्मा रुद्रेणाकर्षिता पुनः ॥२६॥
उदीच्यां वामदेवास्ये भवानी साप्यवीविशत्। दीप इव शिखायां वै चाकर्षितेश्वरेण च ॥२७॥
विलीनानि च भूतानि सुरासुराश्च सर्वतः। अस्मिञ्ज्योतिर्मये लिङ्गे ज्वालाग्नौ शलभा इव ॥२८॥
एक एव तदा विप्र ! पशुपतिर्जलान्तरे। निशि दीप इव ज्योतिर्लिङ्गरूपे व्यराजत[१०] ॥२९॥
त्रिंशद्वर्षसहस्राणि दिव्यानाञ्च विरूपदृक्। एक एव हरस्तस्थौ सर्वलोकं विसृज्य सः ॥३०॥
ततः ससर्ज लोकाँश्च पशुपतिर्हि चात्मनः। प्रथमञ्च भवानीं तां ततश्चाऽन्यान् शृणु द्विज ॥३१॥
कार्त्तिकी नवमी शुक्ला रविवारेण संयुता। तस्यां विनिर्ययौ सूर्यो भाभिर्विद्योतयन् दिशः[११] ॥३२॥
सोमोऽपि च तथेशानाद्विनिर्ययौ सतारकः। आह्लादयन् दिशः पूर्णे क्षीराब्धाविव पर्वणि ॥३३॥
ब्रह्मा विनिर्ययौ भूयः पूर्ववक्त्राद्विरूपदृक्। पठन् वेदाँश्च पञ्चास्यः सर्वलोकसिसृक्षया ॥३४॥
अघोरवक्त्रतो विष्णुर्विनिर्ययौ महाद्युतिः। अनलोऽपि दिशः सर्वाः हेतिभिर्द्योतयन्पुनः ॥३५॥
सद्योजातााननाद् भूयो लम्बोदरो विनिर्ययौ। वायुरपि महावीरो ववौ पुनर्विनिःसृतः ॥३६॥

---

त्यसपछि ब्रह्माजी ज्योतिर्लिङ्गको तत्पुरुष नाम गरेको पूर्वपट्टिको मुखमा आफ्नो शक्तिसहित देवताको अगाडि नै विलीन हुनुभयो। विष्णु पशुपतिको दक्षिणतिर रहेको अघोर नाम गरेको मुखमा प्रवेश गर्नुभयो। ज्वालामय वह्निस्वरूप यसै मुखमा अग्नि पनि विलीन भए। पश्चिमतर्फ रहेको भगवान् शङ्करको सद्योजात नाम गरेको मुखमा गणेशजी प्रवेश गर्नुभयो। प्रलयको अग्निमा संसार विलीन भएजस्तै गरी वायु पनि त्यसै मुखमा तत्काल विलीन भए ॥२३–२५॥

पशुपतिस्वरूप महालिङ्गमा प्रवेश गर्न लागेका देवतालाई देखेर आफू पनि त्यस शिवलिङ्गको तेजले आकृष्ट भएकी पार्वती अचम्ममा पर्नुभयो। उत्तरपट्टि रहेको वामदेव नाम गरेको शिवजीको मुखमा ज्वालामा बत्ती लीन भएझैँ गरी लिङ्गको तेजबाट आकृष्ट भई पार्वती पनि विलीन हुनुभयो। आगाको ज्वालामा सलह लीन भएजस्तै ज्योतिर्मय लिङ्गमा प्राणीहरू, देवता र राक्षसहरू सबैतिरबाट लीन भए। हे विरूपाक्ष ! त्यसबखत रात्रीको बीचमा दियो बसेजस्तै गरी पानीको बीचमा केवल ज्योतिर्लिङ्गस्वरूप भगवान् पशुपति मात्र सुशोभित हुनुभयो ॥२६–२९॥

हे विरूपाक्ष ! सम्पूर्ण प्राणीहरूलाई संहार गरेर दिव्य तीस हजार वर्षसम्म एक्लै भगवान् शङ्कर बस्नुभयो। हे विरूपाक्ष ! त्यसपछि भगवान् पशुपतिले आफैँ प्राणीहरूको सृष्टि गर्नुभयो। सबैभन्दा पहिले पार्वतीको सृष्टि गर्नुभयो। त्यसपछि अरुको सृजना गर्नुभयो, सुन। कार्तिक शुक्ल नवमी आइतबारका दिन सम्पूर्ण दिशालाई उज्यालो तुल्याउँदै त्यसै लिङ्गबाट सूर्य पैदा हुनुभयो। त्यसैगरी तारासहित चन्द्रमा पनि पूर्णिमाको दिन दशै दिशा उज्यालो पार्दै समुद्रमा उदाए झैँ गरी शिवजीबाट बाहिर निस्किए ॥३०–३३॥

हे विरूपाक्ष ! फेरि सम्पूर्ण लोकको सृष्टि गर्ने इच्छाले पाँच मुख भएका ब्रह्माजी वेद पढ्दै शिवजीको पूर्वपट्टिको मुखबाट प्रकट हुनुभयो। अत्यन्त कान्ति भएका भगवान् विष्णु शिवजीको अघोर वक्त्रबाट प्रकट हुनुभयो। त्यस्तै आफ्ना ज्वालाले सम्पूर्ण दिशालाई उज्यालो तुल्याउँदै अग्नि पनि निस्कनुभयो। भगवान् शङ्करको सद्योजात नाम गरेको मुखबाट गणेश निस्कनुभयो। महावीर वायु पनि फेरि निस्किएर वगन थाल्नुभयो ॥३४–३६॥

---

८. अलीलियत्ततः, इति न.सं.पु.पाठः।
९. प्रेक्ष्य देवान्प्रवेशकान्, इति न.सं.पु.पाठः।
१०. दीप इव क्षपामध्ये ज्योतिर्लिङ्गो विराजते, इति न.सं.पु.पाठः।
११. सूर्यस्तस्माद्विद्योतयन् दिशः, इति न.सं.पु.पाठः।

सोऽपश्यद्देवताः सर्वा लिङ्गाद्विनिःसृतास्तथा। मुमुदे च भृशं मेने ईश्वरः सत्यमित्यजः ॥३७॥
ब्रह्मणः कारणाद् भूयो जगत्सर्वं चराचरम्। एवमेव यथापूर्वमासीत्सत्यं विरूपदृक् ॥३८॥
कल्पान्ते पुनरेतस्मिँल्लिङ्गे सिद्धैः सुरर्षिभिः। लीयते सर्वभूतैश्च[१२] यथा गृहेषु रात्रयः ॥३९॥
आलयः सर्वभूतानां तस्मात्स जगदालयः। लीयन्ते सर्वलोकास्ते[१३] तस्माल्लिङ्गमिति श्रुतम् ॥४०॥
वेदीभूतां भवानीन्तां विद्याल्लिङ्गं तथेश्वरम्। उमामाहेश्वरी मूर्तिरिव[१४] लिङ्गं परात्परम् ॥४१॥
भुक्तिमुक्तिप्रदः साक्षात्पशुपतिरयं विभुः। सकृत्पश्यति यो लिङ्गं तस्य पुण्यफलं शृणु ॥४२॥
वाजपेयसहस्रोत्थं चाश्वमेधसहस्रजम्। सर्वक्रतूद्भवं पुण्यं सर्वदानोद्भवं फलम् ॥४३॥
आदाय शिवलोकं स निष्पापः खलु गच्छति। देहान्ते च ततो विप्र ! सत्यमेतन्न संशयः ॥४४॥
भक्त्या प्रेक्ष्य नमेल्लिङ्गं दण्डवत्पातयेत्तनुम्। तिर्यक्योनिं परित्यज्य दुःखसंसारसंसृतिम् ॥४५॥
तेषां फलं समादाय व्रजेच्छैवं पुरं पुरम्। परिक्रामति यो भक्त्या लिङ्गं पशुपतिं महत् ॥४६॥
सर्वजन्मार्जितैः पापैर्मुक्तः परं स गच्छति। तन्मनुं प्रजपेदत्र चाभ्यर्च्य पशुपेश्वरम् ॥४७॥
भस्माङ्गी खलु रुद्राक्षी तस्य पुण्यफलं शृणु। यावच्च जीवतीहासौ रुद्रवद्विचरेद्भुवि ॥४८॥
देहान्ते लीयते लिङ्गे सदेहो वाथवा शिवः। देवासुरर्षिभिः सिद्धैः सेव्यते लिङ्गमैश्वरम् ॥४९॥

---

पार्वतीले लिङ्गबाट निस्किरहेका सबै देवतालाई देख्नुभयो। त्यसपछि ईश्वर नै सत्य हुनुहुँदो रहेछ, अजन्मा हुनुहुँदो रहेछ भनेर पार्वतीले ठान्नुभयो र अत्यन्त प्रसन्न हुनुभयो। हे विरूपाक्ष ! परब्रह्म परमात्माका कारणले गर्दा यो चर तथा अचर जगत् पहिले जस्तो थियो, त्यस्तै बन्यो। कालान्तरमा फेरि यसै लिङ्गमा सिद्ध, देवता, ऋषि तथा प्राणीहरू घरमा राति मानिस लीन भएझैँ विलीन हुन्छन् ॥३७-३९॥

भगवान् शङ्कर सबै प्राणीहरूका आलय हुनुहुन्छ। त्यसैले उहाँलाई संसारको आलय मानिन्छ। सम्पूर्ण प्राणीहरू उहाँमा लीन हुन्छन्, त्यसैले उहाँलाई लिङ्ग भनिन्छ। शिवलिङ्गमा रहेको वेदी पार्वतीको रूप हो। त्यहाँको लिङ्ग भगवान् शङ्करको रूप हो। त्यसैले लिङ्गलाई उमा र महेश्वरको मूर्ति मानिन्छ। यो लिङ्ग उत्तमभन्दा पनि उत्तम हुन्छ। पशुपतिनाथ साक्षात् भुक्तिदाता र मुक्तिदाता हुनुहुन्छ। जुन मानिसले एकपटक मात्रै भए पनि उहाँको दर्शन गर्छ त्यसको पुण्यफल सुन। हजारौँ अश्वमेध यज्ञ, हजारौँ वाजपेय यज्ञ, हरेक किसिमका अरू यज्ञ र हरेक किसिमका दान गर्दा जुन फल पाइन्छ, त्यो फल एक पटक पशुपतिनाथको दर्शन गर्दा उपलब्ध हुन्छ ॥४०-४३॥

हे विरूपाक्ष ! त्यस्तो मानिस शरीर छोडेपछि पापरहित भएर शरीरैसित शिवलोक जान्छ। यो साँचो हो, यसमा सन्देह छैन। शरीरलाई दण्डजस्तै बनाएर, भक्तिपूर्वक जसले शिवलिङ्गको दर्शन गर्छ त्यो व्यक्ति पशुको जुनि र संसारको दुःखबाट मुक्त हुन्छ। जसले भक्तिपूर्वक परमेश्वर पशुपतिको लिङ्गको परिक्रमा गर्छ त्यसबाट प्राप्त हुने पुण्य लिएर त्यो महान् शिवलोकमा जान्छ। जसले भगवान् पशुपतिको पूजा गरेर यहाँ उहाँको मन्त्र जप गर्छ त्योसम्पूर्ण जन्ममा गरेका पापबाट मुक्त भएर त्यो परमधाममा जान्छ। विभूति लगाउने र रुद्राक्षमाला धारण गर्ने व्यक्तिले के कस्तो पुण्यफल पाउँछ त्यो कुरा सुन। त्यस्तो मानिस जहाँसम्म बाँच्दछ, त्यहाँसम्म शिवजीजस्तै भएर यस धरातलमा हिँडेको हुन्छ। शरीरको अन्त्य भएपछि ऊ शिवलिङ्गमा विलीन हुन्छ अथवा शरीरैसहित शिवस्वरूप हुन्छ। त्यसलाई देवता, ऋषि र सिद्धहरूले सेवा गर्छन् ॥४४-४९॥

---

१२. सर्वभूतैश्च लीयन्ते, इति न.सं.पु.पाठः। १३. सर्वलोकैर्वै, इति न.सं.पु.पाठः।
१४. मूर्तिमेतत्, इति न.सं.पु.पाठः।

त्रैलोक्यभवनं त्यक्त्वा चात्रैव प्रवसन्मुहुः । शृणु कश्चित्पुरा मुक्तः काम्बोजो नाम विश्रुतः ॥५०॥
म्लेच्छो हिमवतश्चाऽधो भुव्युत्तरदिशि स्थितः । जातिस्मरणतीर्थेऽसौ त्रिवारं तज्जलं पपौ ॥५१॥
प्राग्जातिस्मरणं प्राप्तो म्लेच्छो नामाधिपो द्विज । त्यक्त्वा प्रियां प्रियं राज्यं सर्वस्वं तृणवन्नृपः ॥५२॥
राज्याद्विनिःसृतो म्लेच्छोऽस्थिरां तां संसृतिं विदन् । तदाधावन्निरोद्धुं तं भार्या पुत्राश्च मन्त्रिणः ॥५३॥
पथि संरुध्य भूपं तमूचुर्मधुरया गिरा ।

भृत्या ऊचुः

क्व यास्यसि महाराज ! त्यक्त्वा राज्यं सुखञ्च नः ॥५४॥
तदुत्थिता कथं स्वान्ते विरक्तिर्भूपते तव ।

काम्बोज उवाच

कस्य पुत्रः सुखं राज्यं भार्या सर्वस्वमर्थकम् ॥५५॥
तत्सुखानि च भो भृत्याः भुक्त्वा जीवति कश्चिरम् । शृणु भृत्या पुरा यत्तज्जन्म लब्धं सहस्रशः ॥५६॥
ततो लब्धोऽप्ययं देहः सिद्धेश्वरप्रसादतः । बहुयोनिषु सञ्जातः स्वेदजेष्वण्डजेषु च ॥५७॥
उद्भिज्जोऽहं ततः कालाज्जरायुजो बहु पुनः । नियुतवत्सरान्तेऽहं वाग्वत्यां निधनात्पुनः ॥५८॥
लब्ध्वा विप्रतनुं काश्यां प्रतिग्रहपरोऽभवम्[१५] । असत्प्रतिग्रहात्तस्यां तदुपजीवनादहम् ॥५९॥
मर्कटतां समापन्नः[१६] तस्माल्लब्धो हिमाचलः । ततः पशुपतेः पुण्ये चावात्सं सिद्धकानने ॥६०॥
फलमूलाशनोऽजस्रं सिंहव्याघ्रभयातुरः । पशुपतेर्हि कौवेर्यां यत्र सिद्धेश्वरो विभुः ॥६१॥

---

स्वर्गलाई पनि छोडेर यसै ठाउँमा बसोवास गर्ने काम्बोज नाम गरेका कुनै व्यक्ति अघि मुक्त भए, त्यो कुरा सुन । ती म्लेच्छले हिमालयको तल्लो भागमा उत्तरतिर बसेर जातिस्मरण तीर्थमा गई तीन पटक त्यस तीर्थको जल पिएका थिए। हे विरूपाक्ष ! त्यस तीर्थको जल पिउनाको प्रभावले म्लेच्छकुलमा पैदा भएका ती राजालाई पूर्वजन्मको सम्झना भयो । त्यसपछि सम्पूर्ण राज्य र सर्वस्वलाई झारबराबर ठानेर त्याग गरे । संसारलाई अनित्य सम्झेर ती म्लेच्छ राजा राज्य छोडेर निस्किए । त्यसबेला उनलाई रोक्न रानी, छोराहरू र मन्त्रीहरू दौडिए । बाटमा रोकेर उनीहरूले मीठो भाषामा भने ॥५०–५३½॥

मन्त्रीहरूले भने – हे महाराज ! यो राज्यको सुख र हामीहरूलाई छोडेर हजुर कता जाँदै हुनुहुन्छ ? हे राजन् ! हजुरको मनमा कसरी वैराग्य पैदा भयो ? ॥५४½॥

कम्बोज नाम गरेको म्लेच्छले भने – हे मन्त्री हो ! कसको छोरो सुख, राज्य, पत्नी, सर्वस्व र त्यसबाट हुने सम्पूर्ण सुविधालाई भोग गरेर सधैं बाँचिरहन्छ ? हे मन्त्री हो ! मैले यसअघि हजारौं जन्महरू भोगिसकें । त्यसपछि सिद्धेश्वरको अनुकम्पाबाट मैले यो शरीर पाएको छु ॥५५–५६½॥

म पहिले स्वेदज योनिमा पैदा भएँ, त्यसपछि अण्डजयोनिमा मैले अनेक पटक जन्म लिएँ । पछि उद्भिज्जयोनिमा प्राप्त भई धेरै समयपछि म जरायुजयोनिमा पैदा भएँ। लाखौं वर्षपछि म फेरि यसै वाग्वतीनदीको तीरमा मरेको हुँदा प्रतिग्रह लिने ब्राह्मणको शरीर लिएर काशीमा जन्मिएँ। खराब किसिमको प्रतिग्रह लिएर जीविका चलाएको हुँदा म पछि बाँदर भएर जन्मिएँ। त्यसपछि हिमालयमा आएँ। त्यसपछि सिंह र बाघदेखि डराउँदै फलफूल तथा कन्दमूल खाएर सधैं म सिद्धहरू बस्ने पशुपतिको पवित्र जङ्गलमा बस्न थालें ॥५७–६१॥

---

१५. प्रतिग्राह्यभवं पुनः, इति न.सं.पु.पाठः ।
१६. अभवं मर्कटोऽहञ्च, इति न.सं.पु.पाठः ।

भुक्त्वा बिल्वफलान्याशु बिल्ववृक्षे तदन्तिके। तत्पत्राणि समाकृष्य प्रक्षिप्तं सहसा मया ॥६२॥
सम्यक् तान्यपतन् भृत्याः ! तल्लिङ्गोपरि साम्प्रतम्। कार्त्तिक्यां पूर्णिमायाञ्च प्रातःकालेऽवसं कुजे ॥६३॥
मामुद्दिश्य धनुः पापी तत्रागत्य विभीषयन्। जघान सहसा पापी मे पृष्ठं छद्मगेन च ॥६४॥
निश्चकाम च[१७] सक्रोधो मृगयाभिरतस्ततः। शरप्रहारतस्तस्य पीडितोऽहञ्च तत्कुजात् ॥६५॥
अवतीर्याशु दुद्राव चार्यातीर्थञ्च प्राप्तवान्[१८]। आर्यातीर्थजलं प्राश्य तत्रैव निधनं गतः ॥६६॥
तद्देहश्च[१९] ममैवाशु रुद्रलोकञ्च लब्धवान्। शतं युगं स्थितस्तत्र सर्वतो विगतज्वरः ॥६७॥
सिद्धेश्वरप्रसादाद्वै तत्तीर्थे निधनात्पुनः। तत्पुण्यसंक्षयात्तस्माद् भ्रष्टोऽहमत्र वै पुनः ॥६८॥
एषा तनुर्मया लब्धा लोकवन्द्या नृपोत्तमा[२०]। एतत्तीर्थजलं पीत्वा त्रिवारञ्च मया पुनः ॥६९॥
पूर्वजातिपरिज्ञानं लब्धं तयोः प्रसादतः। अतोऽधुना ह्यहं भृत्या ! लिङ्गं पाशुपतं परम् ॥७०॥
व्रजामि सेवितुं पुण्यं यत्रोवाह च वाग्वती[२१]। राज्यं नेच्छामि हे भृत्याः ! लोभमोहभयाकुलम् ॥७१॥
गच्छत स्वाश्रमं यूयं तं सेवितुं व्रजाम्यहम्।

भृत्या ऊचुः

गृहस्थानां समो धर्मः परो नास्ति नृपोत्तम ॥७२॥
अभ्यागतान् च सत्कृत्य प्रीत्या भोजनदानतः[२२]। इन्द्रः सम्प्रीयते विष्णुः तेषाञ्च पादशौचतः[२३] ॥७३॥
पूजनैः शिवधातारौ होमेन पितरः समे[२४]। स्वर्गादि सत्फलप्राप्तिर्भवेत् तेषां समादरात्[२५] ॥७४॥
अतिथिपालनान्नित्यं स्वर्गः तस्य गृहेषु च।

---

सधैं पशुपतिको उत्तर दिशामा जहाँ सिद्धेश्वर भगवान् बस्नुहुन्थ्यो, त्यसको नजिकै बेलको रुखमा फलेको बेल खाएँ। त्यसपछि मैले विनाकाममा त्यसै रुखका पात टिपेर तल खसालेँ। त्यसरी तल खसालेका बेलका पातहरू सिद्धेश्वर भगवान्‌को लिङ्गमाथि पर्न गएछन्। हे मन्त्री हो ! त्यसदिन कार्तिक पूर्णिमाको प्रातःकाल थियो। म रुखमा चढेको थिएँ। त्यहाँ मलाई डर देखाउन हातमा धनुष लिएर एउटा पापी अचानक आयो र मलाई दया नराखीकन बाणले हिर्कायो। रिसाएर निर्दय भई ममाथि प्रहार गरेको बाणको पीडाले गर्दा म रुखबाट ओर्लिएँ र दौडिँदै त्यहाँबाट भागेँ र आर्यघाटमा गएर डुबुल्की मारेँ। आर्यातीर्थको जल पिएपछि म त्यसै ठाउँमा मरेँ। मेरो शरीर तुरुन्तै रुद्रलोकमा पुग्यो ॥६२-६६॥

सम्पूर्ण तापबाट मुक्त भएर सय युगसम्म त्यसै लोकमा बसेँ ॥६७॥ सिद्धेश्वरको अनुग्रह र त्यस उत्तम तीर्थमा मरण भएका कारण म रुद्रलोकमा थिएँ तर त्यो पुण्यफल सिद्धिएको हुनाले म फेरि भ्रष्ट भएर मैले दुनियाद्वारा मानिएको राजाको यो शरीर पाएँ। यसै तीर्थको जल तीनपटक पिएको हुनाले शिवजी र पार्वतीको अनुग्रहले गर्दा मैले पूर्वजन्मको ज्ञान पाएँ। हे बाबु हो ! यसैले म अहिले जहाँ वाग्वती हुनुहुन्छ त्यसै ठाउँमा भगवान् शिवजीको लिङ्गको आराधनाका लागि जाँदैछु। हे मन्त्री हो ! लोभ, मोह र भयले सताउने यो राज्य मलाई चाहिँदैन। तिमीहरू आ-आफ्नो घर जाओ। म शिवजीको आराधना गर्न जान्छु ॥६७-७१½॥

मन्त्रीहरूले भने – हे महाराज ! गृहस्थाश्रमजस्तो अर्को धर्म छैन। पाहुनाहरूलाई बोलाएर उनीहरूको स्वागत गराउनाले, भोजन गराउनाले इन्द्र पनि खुसी हुन्छन्। उनीहरूको गोडा धोयो भने विष्णु पनि प्रसन्न हुन्छन्। सत्कार गऱ्यो भने ब्रह्मा र शङ्कर पनि प्रसन्न बन्नुहुन्छ। होम गऱ्यो भने पितृ र देवताहरू खुसी हुन्छन्। जसले भनेजस्तो गरेर खान लाउन दिन्छ, त्यसले चाहेका सबै फल प्राप्त गर्दछ। अतिथिलाई पालेर राख्यो भने घर पनि सधैँ स्वर्गजस्तै हुन्छ ॥७२-७४½॥

---

१७. निर्दयमपि, इति न.सं.पु.पाठः।
१८. चार्यातीर्थमवाप्तवान्, इति न.सं.पु.पाठः।
१९. तच्छरीरम्, इति न.सं.पु.पाठः।
२०. एतां तनुं मया लब्धां लोकवन्द्यां नृपोत्तमाम्, इति न.सं.पु.पाठः।
२१. यत्र ववाह वाग्वती, इति न.सं.पु.पाठः।
२२. स्वागतेनाह्वः प्रीतिरशनेन शतक्रतुः, इति न.सं.पु.पाठः।
२३. विष्णोश्च पादशौचेन चार्चनैर्ब्रह्मशङ्करम्, इति न.सं.पु.पाठः।
२४. होमेन पितृदेवाश्च ययुः स्वर्गं विधीयते, इति न.सं.पु.पाठः।
२५. सर्वं फलं भवेत्तस्य यथोक्तं यस्तु पोषयेत्, इति न.सं.पु.पाठः।

वनेऽपि दोषाः प्रभवन्ति रागिणां गेहेऽपि पञ्चेन्द्रियनिग्रहस्तपः ।
अकुत्सिते कर्मणि यः प्रवर्त्तते निवृत्तरागस्य गृहं तपोवनम् ॥७५॥

काम्बोज उवाच

कामः क्रोधस्तथा लोभो देहे तिष्ठन्ति तस्कराः । मुष्णन्ति ते जगत्सर्वं तद् व्यर्थं तनुपोषणम्[२६] ॥७६॥
स्नेहकामानले कुण्डे होतारो मोहविप्लुताः । नराणां तत्र हूयन्ते यौवनानि धनानि च ॥७७॥
यत्र स्नेहो भयं तत्र स्नेहो दुःखस्य भाजनम् । स्नेहमूलानि दुःखानि तानि त्यक्त्वा भवेत् सुखी ॥७८॥
शैशवे च चरेद् धर्ममनित्यं जीवनं खलु[२७] । फलानामिव पक्वानां पतनं[२८] नरके ध्रुवम् ॥७९॥
मायामोहितमर्त्याश्च[२९] पुत्रदारधनान्विताः । जायन्ते च म्रियन्ते च ह्यनन्तनिधनोद्भवाः ॥८०॥
बहुदुःखं भवेद्राज्यं[३०] लोभमोहमदाकुलम् । पुत्रादपि भयं यत्र तत् सन्त्यज्य भवेत् सुखी ॥८१॥
सहस्रेषु ह्यहं जातो मत्तः परं[३१] सहस्रशः । परम्परा सन्ततीनां[३२] पशुमायाविमोहिता ॥८२॥
जन्मसंसारभीतोऽस्मि जन्मनाशौ[३३] पुनः पुनः । जन्ममरणसंयुक्तो देहोऽयं पाञ्चभौतिकः ॥८३॥
क्षुधा तृष्णा महत् कष्टं[३४] गर्भवासेषु दारुणम् । इन्द्रियाणि तनुश्चैव[३५] दह्यन्ते जठराग्निना ॥८४॥
तस्माज्जन्म न वाञ्छामि नैव राज्यं सुतं प्रियाम्[३६] । गच्छामि शरणं तात ! पशुपतेः परात्परम् ॥८५॥

---

वनैमा बसे पनि वैराग्य उठेन भने अनेक दोषहरू आइलाग्छन् । घरैमा बसे पनि इन्द्रियलाई जितेका छ भने त्यो तपस्या हुन्छ । जो मानिस असल काममा प्रवृत्त हुन्छ, जसको विषयभोगप्रतिको अनुराग हटेको छ त्यसका निम्ति घर पनि तपोवन नै हो ॥७५॥

काम्बोज राजाले भने- शरीरमा काम, क्रोध, लोभ आदि चोरहरू बस्छन् । त्यसैले यो शरीरलाई पोस्नु व्यर्थ हो । समस्त जगत्को मोहमा डुबेका मानिसहरूलाई स्नेह र कामरूपी अग्निमा हवन गर्ने तिनै चोरहरू हुन् । त्यो कुण्डमा मानिसको जवानी, धन आदि सबै हवन गरिन्छ । जहाँ माया छ, त्यहाँ डर हुन्छ । स्नेह नै दुःखको कारण हो । दुःख पैदा गर्ने मूल तत्व स्नेह नै हो । त्यसैले स्नेह छोड्ने मानिस अत्यन्त सुखी हुन्छ । जीवन अनित्य छ, यो कहिले खतम हुने हो निश्चित छैन । त्यसैले सानो उमेरमा नै धर्म गर्नुपर्छ, होइन भने पाकेका पलहरू आकाशबाट भुईंमा खसेझैं अवश्य नै नरकमा परिन्छ । छोरा, स्वास्नी र धनले युक्त भएर मायामा डुबेका मनुष्यहरूको अनन्त पटक जन्म र मृत्यु हुन्छ । तिनीहरू जन्मिरहन्छन्, मरिरहन्छन् ॥७६-८०॥

लोभ, मोह र मात्सर्यले युक्त भएको राज्य पनि अत्यन्त दुःखदायक हुन्छ । त्यहाँ छोराबाट पनि डराउनुपर्छ । त्यसैले राज्य छोड्दा सबैभन्दा सुखी हुन्छ । हजारमा म जन्मिएँ, मबाट हजार जन्मिए अर्थात् सन्तानको परम्परा चल्दै आएको छ । पशुको मायाबाट मोहित भएर छोराबाट छोरा जन्मिए । अनेक जुनी लिएर जन्मनुपर्ने यस संसारदेखि म डराएको छु । यहाँ बारम्बार जन्म र मृत्यु भइरहन्छन् । यो पाञ्चभौतिक शरीर जन्म र मृत्युले युक्त भएको छ । गर्भमा बसेका बेला भोक-तीर्खाले अत्यन्त सताउँछन् । चञ्चल इन्द्रियहरू र शरीरसमेत जठराग्निमा डढ्न पुग्छन् । त्यसैले जन्म, राज्य, छोरो, धन, पत्नी आदि कुनै पनि विषय चाहन्नँ । हे बाबु हो ! म उत्तम भगवान् श्रीपशुपतिनाथको शरणमा जान्छु ॥८१-८५॥

---

२६. तस्मात्त्यजेदिमां तनुम्, इति न.सं.पु.पाठः ।
२७. बालत्वे चरिते धर्म अनित्यं खलु जीवितम्, इति न.सं.पु.पाठः ।
२८. जायते, इति न.सं.पु.पाठः ।
२९. गगनमिव मर्त्याश्च, इति न.सं.पु.पाठः ।
३०. राज्यमपि बहुदुःखम्, इति न.सं.पु.पाठः ।
३१. मयि जातः, इति न.सं.पु.पाठः ।
३२. सुतेन हि सुतो जातः, इति न.सं.पु.पाठः ।
३३ जन्मनि च, इति न.सं.पु.पाठः ।
३४. महत्तीव्रम्, इति न.सं.पु.पाठः ।
३५. चलत्वेन, इति न.सं.पु.पाठः ।
३६. कार्यं मे राज्यं पुत्र धनं प्रियाम्, इति न.सं.पु.पाठः ।

सिद्धर्षिरुवाच

इत्युपदिश्य तेभ्योऽसौ म्लेच्छाधिपश्च सत्त्वरम् । त्यक्त्वा तान्[३७] निशि चैकाकी जगाम हिमवद्गिरिम् ॥८६॥
म्लानश्रियस्ततो भृत्याः पुरोधाय नृपात्मजम् । जग्मू राज्यञ्च ते तस्मै चाभिषेकं ददुर्मुदा ॥८७॥
विलङ्घ्य हिमवन्तञ्च काम्बोजोऽसाविहाययौ । आर्यातीर्थे मुदा सस्नौ पूर्वजन्मविपाकतः ॥८८॥
कार्त्तिक्यां पूर्णिमायां स सस्नौ तीर्थेषु भक्तितः । आर्यातीर्थे त्रिवेण्याञ्च खर्वरिके मृगोदके ॥८९॥
स स्नात्वा विधिवत्तेषु सिद्धेश्वरं समार्चयत्[३८] । आज्ञां प्रार्थ्य ततो रुद्रात्प्रणम्यात्राययौ पुनः ॥९०॥
ननाम वासुकिं लिङ्गं पञ्चवक्त्रं तु तैजसम्[३९] । दण्डवत्पातयन् देहं भूमौ भक्त्या पुनः पुनः ॥९१॥
आदाय चोपदेशं स ऋतुमुनिवरान्नृपः । परिक्रम्य महालिङ्गं भक्त्यानम्य यथाविधि ॥९२॥
सम्पूज्य विधिवल्लिङ्गं वाद्यैः पञ्चोपचारकैः । जजाप तन्मनुं भक्त्या स्थिरचित्तो दिवानिशम्[४०] ॥९३॥
वरपुलकितदेहो ध्यायमानो हृदब्जे
स्मरहरहरमाद्यं ज्योतिरेकं हि साक्षात् ।
परिकरशिखयासौ नूनमग्राहि तत्र
शलभ इव कृशानावीश्वरेण स्वकीये ॥९४॥
म्लेच्छाधिपेन पूर्वञ्च प्रसादात्तीर्थलिङ्गयोः । पुरा कृतेन यल्लब्धं सायुज्यं पशुपेश्वरे ॥९५॥
एवं लब्धञ्च सायुज्यं वेदगर्भेण शर्मणा । सङ्गमेषु च वाग्वत्याः स्नात्वा लिङ्गस्य दर्शनात्[४१] ॥९६॥

---

नेमुनिले भन्नुभयो – यति कुरा भनेर म्लेच्छाधिपति ती राजा तुरुन्त तिनीहरूलाई रातमा त्यहीँ छोडेर एक्लै हिमालय पर्वतमा गए । मलिन मुख लगाएका मन्त्रीहरू राजाका छोरालाई अगाडि लगाएर राज्यतिर फर्किए । प्रसन्न भएर उनीहरूले त्यसको अभिषेक गरे । ती काम्बोज नाम गरेका राजा हिमालय पार गरेर यस ठाउँमा आए । पूर्वजन्मको कर्मले गर्दा उनले आर्यातीर्थमा आएर प्रेमपूर्वक स्नान गरे ॥८६–८८॥

कार्तिक शुक्ल पूर्णिमाको दिन उनले भक्तिपूर्वक आर्यातीर्थ, त्रिवेणी, खर्वरिका र मृगोदक तीर्थमा स्नान गरे । उनले ती तीर्थमा स्नान गरेर सिद्धेश्वरको पूजा गरे र शिवलाई प्रणाम गरी उहाँसित अनुमति लिएर फेरि यहाँ आए । यसपछि उनले भक्तिपूर्वक पञ्चमुखी वासुकि र तेजस्वी लिङ्गलाई भुइँमा शरीरलाई लड्ठीजस्तै लम्पसार पारेर प्रणाम गरे । ती राजाले ऋतुनामक मुनिवरसित उपदेश लिएर भक्ति र विधिपूर्वक त्यस महालिङ्गको परिक्रमा गरे ॥८९–९२॥

हे विरूपाक्ष ! लिङ्गको विधिपूर्वक बाजा र पञ्चोपचारले पूजा गरे । रातभर भक्तिपूर्वक शिवमन्त्र जपे । त्यसपछि उनले अत्यन्त रोमाञ्चित हुँदै हृदयकमलमा बसेका कामदेवलाई भस्म गर्ने ज्योतिस्वरूप शिवजीको ध्यान गरे र बत्तीका ज्वालाले पुतलीलाई आफूमा समाहित गराएझैँ ईश्वरले आफूमा भक्तलाई लीन गराए । यसरी अघि यस तीर्थ र यस लिङ्गको अनुकम्पाले गर्दा म्लेच्छाधिपतिले पशुपतिमा मुक्ति प्राप्त गरेका थिए । यसैगरी वेदगर्भशर्मा नाम गरेका ब्राह्मणले वाग्वतीको सङ्गममा स्नान गरेर शिवलिङ्गको दर्शन गरेको हुँदा मुक्ति पाएका थिए ॥९३–९६॥

---

३७. तान् त्यक्त्य, इति न.सं.पु.पाठः ।
३८. समर्चितः, इति न.सं.पु.पाठः ।
३९. सुतेजसम्, इति न.सं.पु.पाठः ।
४०. यावद्विप्र हरं निशि, इति न.सं.पु.पाठः ।
४१. लिङ्गप्रदर्शनात्, इति न.सं.पु.पाठः ।

विरूपाक्ष उवाच

भगवञ्छ्रोतुमिच्छामि भूयोऽहं भवतो ध्रुवम् ॥९७॥
स्नातव्यं सङ्गमे भक्तैरित्युक्तं भवताऽधुना[४२] । कस्मात् तीर्थात्[४३] समारभ्य स्नातव्यं केषु केषु च ॥९८॥
एतद् ब्रूहि मुनिश्रेष्ठ ! सर्ववार्त्ताविशारद ।

सिद्धर्षिरुवाच

सेतुभिन्नं महातीर्थमारभ्य स्नायतां द्विज ॥९९॥
आवाग्मत्युद्भवं सर्वं ततः कामं च प्राप्स्यसि[४४] ।
माहात्म्यं ये वरपशुपतेर्यत्र शृण्वन्ति नूनं
चाऽध्यायेऽस्मिन् सुकृतिनिपुणैर्लभ्यमैशं हि धाम ।
सम्प्राप्यार्यापरशिवपदं तत्र भक्त्येशचित्ता
मोदन्ते ते ससुखमनिशं संविहायेहलोकम् ॥१००॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां
पशुपतिसिद्धेश्वरयोर्माहात्म्यं नाम एकषष्ट्युत्तरशततमोऽध्यायः ॥१६१॥

---

विरूपाक्षले भने – हे भगवन् ! हजुरले वाग्वतीका सङ्गममा स्नान गर्नाले वेदगर्भ शर्मा मुक्त भए भन्नुभयो। त्यो कुरा म फेरि सुन्न चाहन्छु। हे मुनिश्रेष्ठ ! वाग्वतीको स्नान गर्दा कुन तीर्थबाट सुरु गरी कुन कुन तीर्थमा स्नान गर्ने ? हजुर सम्पूर्ण कुरा जान्नुहुन्छ, यो कुरा पनि मलाई बताउनुहोस् ॥९७-९८॥

नेमुनिले भन्नुभयो – हे विरूपाक्ष ! सेतुभिन्न महातीर्थबाट सुरु गरेर वाग्द्वारसम्म स्नान गर, तिमीले इच्छा लागेका सबै फलहरू प्राप्त गर्नेछौ ॥९९॥

जुन मानिसले यस अध्यायमा वर्णन गरिएको उत्तम पशुपतिको यो माहात्म्य सुन्छन्, तिनीहरूले पुण्यशाली व्यक्तिले मात्र पाउने शिवलोकलाई प्राप्त गर्छन्। भक्तिपूर्वक ईश्वरको चिन्ता गर्ने ती मानिसहरू यस संसारलाई छाडेपछि शिवपद प्राप्त गरी सधैँ सुखका साथ रमाउनेछन् ॥१००॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा पशुपति र सिद्धेश्वरको माहात्म्यनामक
एकसय एकसट्ठिऔँ अध्याय पूरा भयो।

---

४२. वाग्वत्याः सङ्गमान्यन्यैरित्युक्तं भवताऽधुना, इति न.सं.पु.पाठः।　४३. किं तीर्थञ्च, इति न.सं.पु.पाठः।
४४. लभिष्यसि, इति न.सं.पु.पाठः।

# द्विषष्ट्युत्तरशततमोऽध्यायः

## अनेकतीर्थानां नैकविधवैशिष्ट्यवर्णनम्

स्कन्द उवाच

उपदेशं समाकर्ण्य विरूपाक्षश्च नेमुनेः। वाग्वत्याञ्च पुनः सस्नौ सर्वेषु सङ्गमेषु च ॥१॥

सेतुभिन्नं समारभ्य विरूपाक्षो घटोद्‌भव। वाग्वतीसम्भवं यावद् भक्त्या सस्नौ हि तेषु च ॥२॥

मुनिं पप्रच्छ माहात्म्यं नामधेयानि सर्वशः। सङ्गमेषु[1] च वाग्वत्यां तेषु स्नात्वा हि तत्र सः ॥३॥

विरूपाक्ष उवाच

माहात्म्यमभिधानानि तीर्थानां च मुनीश्वर। वाग्वतीसङ्गमानां हि तेषां नानापगायुजाम्[2] ॥४॥

कस्यां कस्यां तिथौ तेषु स्नातव्यं हि वद प्रभो। फलानि कानि स्नानाच्च लभ्यन्ते स्नातकैः पुनः[3] ॥५॥

नेमुनिरुवाच

तीर्थानां तिथिभावं च शृणु वक्ष्ये विरूपदृक्। स्नात्वा फलानि लभ्यन्ते स्नातकैः सकलानि च ॥६॥

सेतुभिन्ने महातीर्थे शुक्लाष्टम्यां मधोः कृतात्[4]। स्नानात् यज्ञफलं[5] प्राप्य रुद्रलोके महीयते ॥७॥

सर्वपर्वसु यत्नेन स्नातव्यं धीमताऽनिशम्। विशेषेण मधोर्मासे कोटिगुणफलं लभेत् ॥८॥

सर्वतीर्थमये तीर्थे स्नानं दानं च यत्कृतम्। तत्सर्वमक्षयं प्राप्य रुद्रलोकं वसेत्सुखी ॥९॥

वियोगः कान्तया यस्य यस्याश्च स्वामिना[6] पुनः। तद्योगं वाञ्छितं प्राप्य गच्छेतां शिवधामनि[7] ॥१०॥

ततो गोपालतीर्थे च स्नातव्यं द्वादशीतिथौ। मधोः सितेऽसिते[8] वापि गवां कोटिफलं भवेत् ॥११॥

---

## अध्याय – १६२

### अनेक तीर्थहरूका विभिन्न विशेषताहरूको वर्णन

कार्तिक स्वामीले भन्नुभयो – नेमुनिको भनाइ सुनेर विरूपाक्षले वाग्वती र त्यहाँका सबै सङ्गममा फेरि स्नान गरे। हे अगस्त्य मुनि ! सेतुभिन्नतीर्थबाट सुरु गरेर विरूपाक्षले वाग्वतीको उत्पत्तिस्थलसम्म पर्ने सबै तीर्थहरूमा भक्तिपूर्वक स्नान गरे। वाग्वतीको सङ्गम र ती तीर्थहरूमा स्नान गरेर ती विरूपाक्षले नेमुनिसित ती सबैको नाम र माहात्म्य सोधे ॥१–३॥

विरूपाक्षले भने –हे मुनिश्रेष्ठ ! ती तीर्थहरूको नाम तथा माहात्म्य, विभिन्न नदीहरू मिसिएका वाग्वतीका सङ्गमस्थलहरू, तीमध्ये कुन कुन नदीमा स्नान गर्नुपर्ने हो, त्यस स्नानबाट स्नान गर्ने व्यक्तिले के कस्तो फल पाउँछ ? त्यो सबै बताइदिनुहोस् ॥४–५॥

नेमुनिले भन्नुभयो– हे विरूपाक्ष ! तिथि अनुसार तीर्थको भाव म बताउँछु, सुन। त्यसअनुसार स्नान गर्नाले मानिसहरूले सम्पूर्ण फल पाउँछन्। चैत्र महिनाको शुक्ल अष्टमीका दिन सेतुभिन्न महातीर्थमा स्नान गर्ने व्यक्ति सम्पूर्ण यज्ञको फल प्राप्त गरेर रुद्रलोकमा सुहाउँछ। बुद्धि भएको मान्छेले प्रयास गरेर भए पनि सबै पर्वमा सधैँ स्नान गर्नुपर्छ। विशेष गरी चैत्र महिनामा स्नान गर्दा करोडौँ गुणा फल पाइन्छ। सम्पूर्ण तीर्थमय भएको त्यस तीर्थमा स्नान अथवा दान जे गरिन्छ, त्यसले त्यो व्यक्ति सबै अक्षय फल पाएर रुद्रलोकमा सुखसित बस्न पाउँछ। जसको पत्नीसँग वियोग छ अथवा जसको पतिसँग वियोग छ, ती दुबैको संयोग हुन्छ र दुबै शिवलोकमा बस्न पाउँछन्। त्यसपछि चैत्र महिनाको कृष्ण अथवा शुक्ल दुबै द्वादशीका दिन गोपालतीर्थमा स्नान गर्नुपर्छ। त्यसो गर्ने मानिसले करोडौँ गाई दान दिएको फल पाउँछ ॥६–११॥

---

१. सङ्गमानाम्, इति न.सं.पु.पाठः।
२. वाग्वतीसङ्गमानां नानापगाभिः संयुतम्, इति न.सं.पु.पाठः।
३. फलानि कानि च स्नानाल्लभ्यन्ते स्नातकैः पुनः, इति न.सं.पु.पाठः।
४. हि सः, इति न.सं.पु.पाठः।
५. सर्वयज्ञफलम्, इति न.सं.पु.पाठः।
६. पतिना, इति न.सं.पु.पाठः।
७. उभौ शिवपुराश्रितौ, इति न.सं.पु.पाठः।
८. सितासिते, इति न.सं.पु.पाठः।

वन्यजन्तूद्भवैः पापैर्विमुक्तोऽसौ पुराकृतैः । स्नात्वा तत्र व्रजेच्छैवं लब्ध्वा गवां सहस्रकम् ॥१२॥
दामोदरमहातीर्थे तदुपरि विरूपदृक् । मधोः सितैकादश्याञ्च स्नातव्यं भक्तितो बुधैः ॥१३॥
पशुजन्मार्जितैः पापैर्विमुक्तः स्नातकस्ततः । गोमेधानां फलं प्राप्य गवां लोके महीयते ॥१४॥
सर्वौषधिरसे तीर्थे स्नातव्यं भक्तितो नरैः । सर्वे रोगाः प्रणश्यन्ति स्नातकानाञ्च तत्र वै ॥१५॥
पुराकृतैनसो जातैः पापरोगैर्विमुच्यते । स्नानात्तत्रैव पुण्यात्मा रुद्रलोके महीयते ॥१६॥
भृगुपातगणेशाख्यं महातीर्थं सुसिद्धिदम् । राधसितचतुर्थ्याञ्च तस्यां स्नातव्यमार्यकैः ॥१७॥
यः स्नात्वार्चति विश्वेशं गाणपत्यं समाप्नुयात्[९] । अग्निष्टोमफलं प्राप्य विकिल्विषश्च सिद्धिभाक् ॥१८॥
प्रमोदाख्ये महातीर्थे द्वादश्यां स्नाति यो जनः । सितायामसितायां वा मधोस्तस्य फलं शृणु ॥१९॥
विनशने हरद्वारे स्नानाद्यावत् फलं भवेत् । तावद्दशगुणं प्राप्य विष्णुलोके महीयते ॥२०॥
यं यमिच्छन्ति कामञ्च स्त्रियो वा पुरुषाश्च वा । सद्यस्तं ते लभेरन् वै[१०] स्नानात्तत्रैव पर्वसु ॥२१॥
सर्वदानोद्भवं पुण्यं भक्त्या स्नानाच्च प्राप्नुयात्[११] । अश्वमेधफलं प्राप्य रुद्रलोकं स गच्छति ॥२२॥
पूर्वजन्मविपाकेन कुरूपो यदि निष्प्रभा । सुन्दरी सा प्रभायुक्ता निर्मलाङ्गो भवेत्[१२] पुमान् ॥२३॥
कायनिर्मलतीर्थे च स्नानान्निष्पापविग्रहः । प्रगच्छति मुदा स्वर्गं भुक्त्वा भोगान्यथेप्सितान् ॥२४॥
मधोः शुक्लतृतीयायां स्नायात्तत्रैव ना यदि[१३] । दशगवां फलं प्राप्य रुद्रलोकं स गच्छति ॥२५॥

---

यस तीर्थमा स्नान गर्ने व्यक्ति पहिले वन्यजन्तुहत्याजन्य पापहरूबाट मुक्त हुन्छ र हजार गोदान गरेको फल पाएर शिवलोकमा जान्छ। हे विरूपाक्ष ! त्यसभन्दा माथि दामोदरमहातीर्थ छ। बुद्धि भएका मानिसले त्यहाँ चैत्र शुक्ल एकादशीका दिन भक्तिपूर्वक स्नान गर्नुपर्छ। त्यहाँ स्नान गर्ने मानिस पशुसमान मूर्ख भई जीवनयात्रा गर्दा लागेका समस्त पापबाट मुक्त हुन्छ र गोमेधयज्ञ गरेको फल प्राप्त गरेर गोलोकमा ससम्मान रहन पाउँछ ॥१२-१४॥

सर्वौषधिरस नाम गरेको तीर्थमा भक्तिपूर्वक स्नान गर्नुपर्छ। त्यहाँ स्नान गर्ने मानिसहरूका सम्पूर्ण रोगहरू नाश हुन्छन्। त्यहाँ स्नान गर्नाले आत्मा पवित्र हुन्छ। यसरी स्नान गर्ने व्यक्ति आफूले पहिले गरेका पापबाट उत्पन्न भएका रोगबाट मुक्त हुन्छ र रुद्रलोकमा गएर ससम्मान बस्न पाउँछ। भृगुपातगणेश नाम गरेको तीर्थ अत्यन्त सिद्धिदायक छ। वैशाखकृष्ण चतुर्थीका दिन मानिसहरूले त्यस ठाउँमा स्नान गर्नुपर्छ। यसप्रकार स्नान गरेर विश्वेश्वरको पूजा गर्नाले गणपतिको पद प्राप्त हुन्छ। फेरि त्यस्ता साधक अग्निष्टेम यज्ञ गरेको फल पाएर पापबाट मुक्त हुन्छन् र सिद्ध बन्दछन् ॥१५-१८॥

प्रमोद नाम गरेको महातीर्थमा चैत्रशुक्ल अथवा कृष्ण द्वादशीका दिन स्नान गर्दा के फल प्राप्त हुन्छ त्यो कुरा सुन। सरस्वती गुप्त भएको मरुतीर्थमा र हरिद्वारमा स्नान गर्नाले जति फल प्राप्त हुन्छ त्यसको दशगुणा फल प्रमोदतीर्थमा स्नान गर्नाले प्राप्त हुन्छ र स्नान गर्ने मानिस ससम्मान विष्णुलोकमा बस्न पाउँछ। त्यस तीर्थमा पर्वहरूमा स्नान गर्नाले स्त्री अथवा पुरुषले जे जे चाहन्छन् त्यही त्यही फल पाउँछन्। भक्तिपूर्वक त्यहाँ स्नान गर्नाले सम्पूर्ण दान गर्दा जुन पुण्य हुन्छ त्यही पुण्य प्राप्त गर्दछ र अश्वमेध यज्ञ गरेको फल प्राप्त गरेर ऊ रुद्रलोक जान्छ। पूर्वजन्मको कुकृत्यले कुनै पुरुष कुरूप भएर वा कुनै स्त्री सौन्दर्यहीन भएर जन्मिएका छन् भने पनि तिनले त्यहाँ स्नान गर्दा स्त्री सुन्दरी र प्रभासम्पन्न हुन्छे भने पुरुषको शरीर निर्मल हुन्छ। कायनिर्मलतीर्थमा स्नान गर्नाले मानिस पापबाट मुक्त हुन्छ। इच्छा अनुसारको भोग भोगेर आनन्दसित ऊ स्वर्गलोकमा जान्छ। चैत्रशुक्ल तृतीयाका दिन कुनै पनि व्यक्तिले त्यहाँ स्नान गर्‍यो भने त्यस मानिसले दशवटा गाई दान गरेबराबरको फल प्राप्त गर्छ र शिवलोक जान्छ ॥१९-२५॥

---

९. लभेद् ध्रुवम्, इति न.सं.पु.पाठः ।
१०. तं लभेयुर्वै, इति न.सं.पु.पाठः ।
११. स्नानाल्लभेन्नरः, इति न.सं.पु.पाठः ।
१२. निर्मलविग्रहः, इति न.सं.पु.पाठः ।
१३. स्नानात्तत्रैव मानवः, इति न.सं.पु.पाठः ।

तदुपरीन्द्रतीर्थे च शक्रस्नाते विकिल्विषः । मनसा चेप्सितं प्राप्य स्नातो याति सुरालयम् ॥२६॥
भाद्रशुक्लस्य षष्ठ्याञ्च स्नातः षष्टिगुणं फलम् । षड्वर्षकृतपापैश्च मुक्तः शाक्रं व्रजेत् सुधीः[१४] ॥२७॥
तदुपरि महातीर्थं पञ्चनदमिति श्रुतम् । चैत्रे सितेऽसिते स्नाता चाऽष्टम्यां त्रिदिवं व्रजेत् ॥२८॥
ईषे शुक्ले च पञ्चम्यां स्नातुस्तस्य फलं शृणु । पञ्चजन्मार्जितैः पापैः स मुक्तो नाऽत्र संशयः ॥२९॥
सर्वपर्वसु यो भक्त्या संस्नाति[१५] विधिवत्पुनः । दशाश्वमेधजं प्राप्य फलं रौद्रं[१६] स गच्छति ॥३०॥
कालतीर्थे नरः स्नात्वा कालपाशैर्विमुच्यते । तत उपरि तीर्थे च स्नात्वा रौद्रं व्रजेत्सुखी[१७] ॥३१॥
मृत्युञ्जये महातीर्थे स्नातुस्तस्य फलं शृणु । सप्तजन्मार्जितं पापमपमृत्युश्च नश्यति[१८] ॥३२॥
दशगङ्गासमे पौषे स्नात्वा रुद्रालयं व्रजेत् । अश्वमेधफलं प्राप्य नवम्यामेकवत्सरात् ॥३३॥
तत उपरि तीर्थञ्च महापातकनाशनम् । सहोदरवधान्मुक्तः कश्चित्स्नानात्पुरा शृणु ॥३४॥
हत्वा भ्रातृन् नृपो म्लेच्छो लोभात्तदग्रहीद्धनम् । तत्पापैर्लेपितः कुष्ठी प्रजात्यक्तो विनिर्ययौ ॥३५॥
भ्रान्त्वा च[१९] मेदिनीं शश्वत्प्राप्तवानत्र पार्थिवः । नारदस्य मुखाच्छ्रुत्वा सस्नौ चाऽत्रैव भक्तितः ॥३६॥
पौषशुक्लचतुर्दश्यां तज्जलस्पर्शनात्तनुः । कुष्ठव्रणैर्विनिर्मुक्ता रुग्भिस्तत्कृतसम्भवैः ॥३७॥
एकसंवत्सरं यावत्तत्र सस्नौ स नित्यशः । सोऽपि ययौ विमानेन ततो मृते त्रिविष्टपम् ॥३८॥

---

त्यसभन्दा माथि इन्द्रले स्नान गरेको इन्द्रतीर्थ छ । त्यहाँ स्नान गरेपछि मानिस पापबाट मुक्त हुन्छ । त्यहाँ नुहाउने व्यक्ति मनले चिताएको फल प्राप्त गरेर स्वर्गलोक जान्छ । भाद्रशुक्ल षष्ठीका दिन त्यस तीर्थमा नुहाउने व्यक्तिले साठीगुणा बढी फल पाउँछ। त्यो बुद्धिमान् मानिस काम, क्रोध आदि छवटा शत्रुलाई जितेर इन्द्रलोक जान्छ। यसभन्दा माथि पञ्चनद नाम भएको ठूलो तीर्थ छ। त्यहाँ चैत्र शुक्ल तथा चैत्र कृष्ण अष्टमीका दिन स्नान गर्ने व्यक्ति स्वर्ग जान्छ ॥२८॥

आश्विन शुक्ल पञ्चमीका दिन नुहाउने व्यक्तिले के फल पाउँछ, त्यो सुन । उसले पाँच जन्मसम्म गरेका पापहरूबाट मुक्ति पाउँछ, यसमा शङ्का छैन । जसले सबै पर्वमा विधिपूर्वक स्नान गर्छ त्यसले दशवटा अश्वमेध यज्ञ गरेको फल पाउँछ, त्यो रुद्रलोकमा जान्छ । जुन मानिसले कालतीर्थमा स्नान गर्छ त्यो कालपाशबाट मुक्त हुन्छ । यस तीर्थमा यमद्वितीयाका दिन स्नान गर्ने व्यक्ति सुखी भएर रुद्रलोकमा जान्छ। मृत्युञ्जयतीर्थमा स्नान गर्ने व्यक्तिलाई जुन फल मिल्छ, त्यो कुरा सुन। उसले सात जुनीसम्म गरेको पापबाट मुक्ति पाउँछ र उसको अकाल मृत्यु हटेर जान्छ॥३२॥

त्यस तीर्थमा पौषमहिनामा स्नान गरी दशगङ्गा स्नान गरे बराबरको फल प्राप्त गरेर शिवलोकमा जान्छ । वर्षभरिको प्रत्येक नवमीका दिन स्नान गर्ने मानिसले अश्वमेध यज्ञ गरेको फल पाउँछ। त्यसभन्दा माथि महापापहरूलाई नाश गर्ने महापातकनाशन नामको तीर्थ छ । एउटै पेटको भाइ मार्ने कुनै व्यक्तिले समेत यस तीर्थमा स्नान गर्दा त्यो मुक्त भएको छ, त्यो कुरा सुन ॥३३-३४॥

कुनै म्लेच्छ राजाले लोभवश आफ्ना भाइहरूलाई मारेर तिनीहरूको सम्पत्ति लिएको थियो। त्यसै पापलेगर्दा ऊ कुष्ठरोगी भयो। जनताले उसलाई राज्यबाट निकालिदिए। त्यहाँबाट निक्लिएपछि सम्पूर्ण पृथ्वी घुमेर त्यो राजा यसै तीर्थमा आइपुग्यो । उसले देवर्षि नारदबाट उपदेश पाएर त्यस ठाउँमा भक्तिपूर्वक स्नान गऱ्यो । पौषशुक्ल चतुर्दशीका दिन त्यस तीर्थको जलस्पर्श गरेको हुँदा उसको शरीर कुष्ठरोगबाट पैदा भएका घाउबाट र त्यसबाट उत्पन्न भएका अन्य रोगबाट मुक्त भयो। एक वर्षसम्म उसले त्यहाँ सधैं स्नान गऱ्यो। मरेपछि त्यो पनि विमान चढेर स्वर्ग गयो ॥३५-३८॥

---

१४. षड्वर्षजेन स मुक्तः शक्रलोकं व्रजेत्सुधीः, इति न.सं.पु.पाठः ।
१५. स्नायते, इति न.सं.पु.पाठः ।
१६. रुद्रलोकम्, इति न.सं.पु.पाठः ।
१७. कालस्य च द्वितीयायां रुद्रलोकं व्रजेत्सखी, इति न.सं.पु.पाठः ।
१८. पापमपमृत्युविनश्यति, इति न.सं.पु.पाठः ।
१९. बभ्रम्य, इति न.सं.पु.पाठः ।

पञ्चाशद्धनुषां दूरे तीर्थराज उदाहृतः[२०] । तदुत्तरप्रयागाख्यं सर्वदुष्कृतनाशनम् ॥३९॥
शङ्खमूलं महातीर्थं सर्वतीर्थोत्तमोत्तमम् । देवर्षिदानवैः सिद्धैः सेवितं भुवि दुर्ल्लभम् ॥४०॥
वैशाखे कार्त्तिके माघे संस्नाति[२१] यो निरन्तरम् । सप्तजन्मार्जितैः पापैर्मुक्तो याति परं पदम् ॥४१॥
पञ्चभिः स महापापैस्त्रिविधैश्च विवर्जितः । ज्ञानतोऽज्ञानतो जातैः[२२] पद्मदलं जलैरिव ॥४२॥
सर्वपर्वसु यत्नेन स्नातव्यं विधिवद् बुधैः । श्रद्धया पूर्णिमायाञ्च चतुर्दश्यां कुहौ तथा ॥४३॥
शताश्वमेधजं पुण्यं वाजपेयसहस्रकम् । स्वर्णतुलाशतोद्भूतं सुस्नानाल्लभते सकृत् ॥४४॥
बालुकया सुनिर्माय लिङ्गमर्चति वै सकृत् । इहलोकं परित्यज्य व्रजेदीशं परात्परम् ॥४५॥
ईषे शुक्लमहाष्टम्यां यः स्नाति च सकृदपि । स्नानञ्च रुद्रधारायां वाग्वत्यां सङ्गमे किल[२३] ॥४६॥
सहस्रजन्मजैः पापैः मुच्यते[२४] पातकादिभिः । सर्वपर्वसु यत्नेन स्नात्वारोहति तत्स्थलीम् ॥४७॥
कोटिजन्मार्जितैः पापैर्मुच्यते चैकवत्सरे । वाजपेयसहस्राणामश्वमेधशतस्य च ॥४८॥
लिङ्गार्चकः फलं लब्ध्वा[२५] रुद्रलोके महीयते । ततोऽमरावतीतीर्थे स्नातव्यं विधिना पुनः ॥४९॥
भाद्रशुक्लचतुर्दश्यामेकादश्यां तथैव च । आजीवनं कृतैः[२६] पापैः स्नातकस्तत्र मुच्यते ॥५०॥

---

त्यहाँबाट पाँच धनुष टाढा उत्तरप्रयाग नाम गरेको सबै पापलाई नाश गर्ने तीर्थराज छ। सबै देवता, ऋषि, दानव र सिद्धहरूले आश्रय लिएको पृथ्वीमा अन्त नपाइने शङ्खमूल तीर्थ सबै तीर्थमा उत्तम महातीर्थ छ। वैशाख, कार्तिक र माघ महिनामा जसले सधैं यस तीर्थमा स्नान गर्छ त्यो सातै जुनीमा कमाएका पापबाट मुक्त हुन्छ, मरेपछि परमपद पाउँछ। जानी अथवा नजानीकन गरेका पञ्चमहापाप तथा आध्यात्मिक, आधिदैविक र आधिभौतिक पापहरूले पनि त्यस तीर्थमा स्नान गर्ने व्यक्तिलाई पानीले कमलको पातलाई छोडेजस्तै छोडिदिन्छन् ॥३९-४२॥

विद्वान् मानिसहरूले खासगरी सबै पर्वहरूमा, पूर्णिमा, चतुर्दशी र अमावास्या तिथिहरूमा विशेष प्रयत्न गरेरैभए पनि यस तीर्थमा श्रद्धापूर्वक विधिवत् स्नान गर्नुपर्छ। यहाँ एकपटक मात्रै स्नान गर्नाले पनि मानिसले सय अश्वमेध यज्ञ गरेको पुण्य, हजार वाजपेय यज्ञ गरेको फल र सय तोला सुन दान गरेको फल प्राप्त गर्छ। बालुवाको लिङ्ग बनाएर एकपटक मात्रै भए पनि जसले पूजा गर्छ त्यो यस लोकलाई छोडेपछि अति उत्तम ईश्वरको लोकमा जान्छ ॥४०-४५॥

आश्विन शुक्ल महाअष्टमीका दिन वाग्वतीको दोभानमा रुद्रधारानामक महातीर्थमा जसले एकपटक मात्रै पनि नुहाउँछ त्यो हजारौं जन्मसम्म गरेका महापातकहरूबाट मुक्त हुन्छ। प्रयास गरेर त्यस तीर्थमा स्नान गरी जुन मानिस पवित्र स्थलीमा चढ्छ, त्यो करोडौं जन्मदेखि गर्दै आएका पापहरूबाट एक वर्षभित्रै छुट्कारा पाउँछ, हजार वाजपेय यज्ञ गरेको र सय अश्वमेध यज्ञ गरेको फल पाउँछ ॥४६-४८॥

त्यस लिङ्गको पूजा गर्ने मानिस रुद्रलोकमा गएर ससम्मान बस्न पाउँछ। त्यसपछि अमरावतीतीर्थमा विधिपूर्वक स्नान गर्नुपर्छ। भाद्र शुक्ल चतुर्दशी र एकादशीका दिन त्यस तीर्थमा स्नान गर्ने मानिस बाँचुञ्जेल गरेका पापबाट मुक्त हुन्छ ॥४९-५०॥

---

२०. तीर्थराजमुदाहृतम्, इति न.सं.पु.पाठः ।
२१. स्नायते, इति न.सं.पु.पाठः ।
२२. कृत्यैः, इति न.सं.पु.पाठः ।
२३ रुद्रधारामहातीर्थे वाग्वत्याः संयुगे द्विज, इति न.सं.पु.पाठः ।
२४. स महा...., इति न.सं.पु.पाठः ।
२५. तल्लिङ्गमर्चकः प्राप्य, इति न.सं.पु.पाठः ।
२६. यावज्जीवकृतैः, इति न.सं.पु.पाठः ।

मौसलमखजं प्राप्यामरावत्यां महीयते। विमलावतीतीर्थञ्च दशचापेषु वर्तते[२७] ॥५१॥
स्नातव्यं कार्त्तिके शुक्लसप्तम्यामत्र श्रद्धया[२८] । स्नान्ति श्रद्धालवो[२९] यत्र दशपापक्षयेप्सया ॥५२॥
ततो मखफलं प्राप्य यान्त्यग्निलोकमुज्ज्वलम्[३०] । तन्निर्मलावतीतीर्थे कार्त्तिकस्य सितेऽसिते ॥५३॥
षष्ठ्यां तिथौ हि स्नानस्य मुने ! शृणु महत् फलम्[३१] । भ्रूणहत्यादिभिः पापैर्मुक्तः शतगवां फलम् ॥५४॥
दशतुलाफलं प्राप्य स्नातो रौद्रं[३२] च गच्छति। वायुमतीमहातीर्थे स्नातव्यं सततं बुधैः ॥५५॥
फाल्गुनपूर्णिमायाञ्च चतुर्दश्यामथापि वा। स्नाता वायुबली भूत्वा भुनक्ति स्नानजं फलम्[३३] ॥५६॥
दशकोटिमखानाञ्च फलभाग् यात्यनिलालयम्[३४] । योगकुण्डे महातीर्थे स्नातकस्य सितस्य च ॥५७॥
कार्त्तिकस्य नवम्याञ्च योगसिद्धिर्भवेद् ध्रुवा[३५] । अष्टमीनवमीयुक्ते मूलार्के भार्गवे दिने ॥५८॥
अपि योगैर्विहीनोऽपि स्नानाद्योगीश्वरो भवेत्। सर्वकर्मोद्भवैः पापैः स मुक्तो नात्र संशयः ॥५९॥
सर्वयज्ञार्चनापुण्यं प्राप्य योगी व्रजेत्परम्। मणितीर्थे पुनः स्नात्वा तृतीयायां मधोः सिते ॥६०॥
दशगवां फलं लब्ध्वा शक्रलोकं स गच्छति। ततस्तीर्थे प्रयागाख्ये मकरस्थे रवौ सदा ॥६१॥
सङ्क्रान्त्याञ्च विशेषेण स्नातव्यं भक्तितो बुधैः। दशधा च प्रयागाख्ये स्नात्वा हि यत्फलं भवेत् ॥६२॥
तत्फलञ्च समादाय स्वर्गे कोटिसमां वसेत्। पीठिकाख्ये महातीर्थे स्नात्वा दशगवां फलम् ॥६३॥

---

त्यसमा स्नान गर्ने व्यक्ति मौसलयज्ञ गर्नाले जुन फल प्राप्त हुन्छ त्यो फल प्राप्त गरी अमरावतीमा पूज्य भएर बस्न पाउँछ। त्यसदेखि दश धनु टाढा विमलावती नाम गरेको तीर्थ छ, त्यस तीर्थमा कार्तिक शुक्ल सप्तमीका दिन दश किसिमका पाप नाश गर्ने विचार लिएर जसले विधिपूर्वक स्नान गर्छ त्यो व्यक्ति अग्निष्टेम यज्ञ गरेको फल प्राप्त गरेर अग्निलोकमा जान्छ ॥५१-५२॥

कार्तिक शुक्ल तथा कृष्ण दुबै पक्षको षष्ठीका दिन जसले निर्मलावती तीर्थमा स्नान गर्छ त्यो अग्निज्वालाले उजलो बनेको अग्निलोकमा जान्छ। षष्ठीतिथिमा स्नान गर्ने व्यक्तिले प्राप्त गर्ने महान् फलका विषयमा सुन्नुहोस्। त्यसरी विधिपूर्वक स्नान गर्ने मासिले भ्रूणहत्या आदि गरेका पापबाट मुक्ति पाएर सयवटा गाईदान गरेबराबरको फल पाउँछ। दशवटा तुलादान गरेसमानको फल प्राप्त गरेर त्यो मानिस रुद्रलोकमा जान्छ। विद्वान् मानिसहरूले वायुवतीतीर्थमा फाल्गुनपूर्णिमा अथवा चतुर्दशीका दिन स्नान गर्नुपर्छ। फाल्गुनपूर्णिमा र चतुर्दशीमा त्यहाँ स्नान गर्नाले वायुजस्तै बलियो होइन्छ र दशकरोड हवन गरेको पुण्य प्राप्त गरेर वायुलोकमा जान पाइन्छ ॥५३-५६॥

कार्तिकशुक्ल नवमीका दिन योगकुण्ड नाम गरेको महातीर्थमा स्नान गर्ने व्यक्तिको योगसिद्धि हुन्छ। मूलनक्षत्र, आइतबार अथवा शुक्रबार परेको अष्टमी र नवमीका दिन त्यस तीर्थमा स्नान गर्‍यो भने योगसाधना नगरेको व्यक्ति पनि योगीश्वर हुन्छ। त्यो व्यक्ति सम्पूर्ण कार्यबाट पैदा भएका पापबाट मुक्त हुन्छ। सम्पूर्ण यज्ञ र पूजा गरेको पुण्य प्राप्त गरेर त्यो योगी परमपदमा पुग्छ। चैत्र शुक्ल तृतीयाका दिन मणितीर्थमा स्नान गर्‍यो भने दश गाई दान दिएको फल प्राप्त गरेर त्यो व्यक्ति इन्द्रलोक जान्छ ॥५७-६०॥

त्यसपछि मकर राशिमा सूर्य रहेको बेला प्रयागतीर्थमा विशेषगरी सङ्क्रान्तिका दिन बुझेका मानिसले भक्तिपूर्वक स्नान गर्नुपर्छ। प्रयागमा दश पटक स्नान गर्दा जुन फल प्राप्त हुन्छ, त्यहाँ स्नान गर्दा त्यही फल प्राप्त हुन्छ। त्यस फललाई प्राप्त गरी स्नान गर्ने व्यक्ति स्वर्गमा एक करोड वर्ष बस्छ। पीठिका नाम गरेको महातीर्थमा माघ महिनाको दुबै नवमीका दिन स्नान गर्दा दशवटा गाई दान गरेको फल प्राप्त हुन्छ र त्यो व्यक्ति विष्णुलोक जान्छ ॥६१-६३॥

---

२७. धनुषां दशदूरे तत्तीर्थञ्च विपलावतीन्, इति न.सं.पु.पाठः।
२८. शुक्लसप्तम्याञ्च विशेषतः, इति न.सं.पु.पाठः।
२९. स्नायते विधिना, इति न.सं.पु.पाठः।
३०. अग्निष्टेमफलं प्राप्य अग्निलोकं स गच्छति, इति न.सं.पु.पाठः।
३१. षष्ठीदिने हि यः स्नात्वा तस्य पुण्यफलं शृणु, इति न.सं.पु.पाठः।
३२. रुद्रलोकं सः, इति न.सं.पु.पाठः।
३३. वायुतुल्यबलो भूत्वा स्नानादभुनक्ति वै सुखम्, इति न.सं.पु.पाठः।
३४. दशकोटिहुतं पुण्यं लब्ध्वा यात्यानिलालयम्, इति न.सं.पु.पाठः।
३५ योगसिद्धिर्भविष्यति, इति न.सं.पु.पाठः।

नवम्योश्च द्वयोर्माघे विष्णुलोकं प्रगच्छति। स्नात्वा त्रिविक्रमे नैकगोदानजफलं भवेत्[३६] ॥६४॥
एकादश्यां द्वयोर्माघे विष्णुलोकं प्रगच्छति। स्वर्णतीर्थे ततः स्नात्वा दशस्वर्णतुलोद्भवम्[३७] ॥६५॥
पुण्यं[३८] लब्ध्वाशु निष्पापो रुद्रलोके वसेत्सुखी। ब्रह्मतीर्थे ततः स्नात्वा माघे प्रतिपदोर्द्वयोः[३९] ॥६६॥
सर्वयज्ञफलं प्राप्य ब्रह्मलोकं स गच्छति। ततः क्षत्रियतीर्थे च मधोः षष्ठ्यां तथा द्वयोः ॥६७॥
राजसूयफलं प्राप्य स्नात्वा शक्रपुरं व्रजेत्। राजेश्वरीमहातीर्थे नवम्योराश्विने द्वयोः ॥६८॥
सप्तजन्मार्जितैः पापैः स्नाता मुक्तो न संशयः[४०]। रोहिण्यृक्षेण युक्तायां यदि स्नाति च बुद्धिमात्[४१] ॥६९॥
इहलोकं परित्यज्य देवीलोके महीयते। उमापतिमहातीर्थे ह्यमावास्यां जलाप्लुतः ॥७०॥
सोमयज्ञफलं[४२] प्राप्य रुद्रलोकं स गच्छति। यदि सोमेन युक्तायां तत्रैव स्नाति चेद्[४३] बुधः ॥७१॥
कोटिजन्मार्जितैः पापैर्मुक्तो[४४] गच्छति शाङ्करम्।
विष्णुतीर्थे च वैशाखे द्वादश्योः स्नाति चेद्[४५] द्वयोः ॥७२॥
गोसहस्रप्रदानस्य फलेन[४६] याति वैष्णवम्। तज्जयमङ्गलातीर्थे स्नातव्यं जयकाङ्क्षिभिः ॥७३॥
मधोः कृष्णचतुर्दश्यां सर्वपापक्षतिर्भवेत्[४७]। आकाशभैरवे तीर्थे मधोः कृष्णाष्टमीदिने ॥७४॥
ब्रह्महत्यां परित्यज्य स्नातो रुद्रपुरं व्रजेत्। श्रीवत्सलामहातीर्थे स्नातको विधिना पुनः ॥७५॥

---

त्रिविक्रम महातीर्थमा माघ महिनाको दुबै एकादशीका दिन स्नान गर्ने व्यक्ति हजार गाई दान गरेको फल प्राप्त गरी विष्णुलोक जान्छ। त्यसपछि स्वर्णतीर्थमा स्नान गऱ्यो भने दशवटा स्वर्णदान र तुलादानको पुण्य प्राप्त हुन्छ। अनि त्यस्तो व्यक्ति पापरहित भएर आनन्दसित रुद्रलोकमा बस्न पाउँछ। दुबै पक्षको माघ महिनाको प्रतिपदा तिथिमा ब्रह्मतीर्थमा स्नान गर्ने व्यक्ति सम्पूर्ण यज्ञको पल प्राप्त गरेर ब्रह्मलोकमा जान पाउँछ ॥६४-६६॥

त्यसैगरी चैत्र महिनाको दुबै पक्षको षष्ठी तिथिमा क्षत्रियतीर्थमा स्नान गऱ्यो भने त्यो व्यक्ति राजसूय यज्ञ गरेको फल प्राप्त गरेर इन्द्रलोक जान्छ। आश्विन महिनाको दुबै पषको नवमीका दिन राजेश्वरी महातीर्थमा स्नान गऱ्यो भने त्यो व्यक्ति सम्पूर्ण जन्ममा लागेका पापबाट मुक्त हुन्छ, यसमा शङ्का छैन। विवेकशील मानिसले रोहिणी नक्षत्रले युक्त भएको तिथिमा स्नान गऱ्यो भने ऊ यस संसारलाई छोडेपछि देवीको लोकमा ससम्मान बस्न पाउँछ। अमावास्याको दिन उमापति महातीर्थमा स्नान गर्ने व्यक्तिले हवन गरेर सोमपान गरेको फल प्राप्त गरी रुद्रलोक जान पाउँछ ॥६७-७०॥

यदि सोमवती अमावास्याका दिन बुद्धि भएको मानिसले त्यहाँ स्नान गऱ्यो भने करोडौं जन्ममा गरेका पापहरूलाई छोडेर त्यो शिवलोक जान पाउँछ। विशाखा नक्षत्रले युक्त भएको दुबै पक्षको द्वादशीका दिन विष्णुतीर्थमा स्नान गऱ्यो भने ऊ हजार गाई दान गरेको फल प्राप्त गरी निष्पाप भएर विष्णुलोक जान्छ। विजयको कामना गर्ने व्यक्तिले चैत्र कृष्ण चतुर्दशीका दिन जयमङ्गलातीर्थमा स्नान गर्नुपर्छ। त्यसो गर्ने व्यक्ति सम्पूर्ण पापबाट मुक्त हुन्छ। चैत्र कृष्ण अष्टमीका दिन आकाशभैरवतीर्थमा स्नान गर्ने व्यक्तिले ब्रह्महत्याजस्तो पापबाट मुक्त भएर शिवलोक जान पाउँछ। ज्येष्ठ शुक्ल दशमीका दिन श्रीवत्सा नाम गरेको महातीर्थमा विधिपूर्वक स्नान गर्ने व्यक्ति दशैथरी पापबाट मुक्त हुन्छ ॥७१-७५॥

---

३६. त्रिविक्रमे महातीर्थे स्नात्वा च गोसहस्रकम्, इति न.सं.पु.पाठः।
३७. स्वर्णतुलादशोद्भवम्, इति न.सं.पु.पाठः।
३८. तावत्, इति न.सं.पु.पाठः।
३९. माघप्रतिपदि द्वयोः, इति न.सं.पु.पाठः।
४०. स मुक्तो नात्र संशयः, इति न.सं.पु.पाठः।
४१. स्नायते यदि धीमता, इति न.सं.पु.पाठः।
४२. सोमपानं हुतम्, इति न.सं.पु.पाठः।
४३. स्नायते, इति न.सं.पु.पाठः।
४४. कोटिजन्मार्जितान् पापान् त्यक्त्वा, इति न.सं.पु.पाठः।
४५. वैशाख्यां द्वादश्यां स्नायते, इति न.सं.पु.पाठः।
४६. गोसहस्रफलं प्राप्य निष्पापः, इति न.सं.पु.पाठः।
४७. सर्वपापैर्विमुच्यते, इति न.सं.पु.पाठः।

ज्येष्ठे सितदशम्याञ्च दशपापैर्विमुच्यते। हस्तर्क्षेण युतायाञ्च संस्नाति यदि बुद्धिमान्[४८] ॥७६॥
गोकोटिजं फलं प्राप्य दुर्गालोकं स गच्छति। कोषोदके महातीर्थे स्नातव्यं विधिना नरैः ॥७७॥
ते भवन्त्यैनसा[४९] मुक्ताः पञ्चम्योः पक्षयोर्द्वयोः। ज्येष्ठर्क्षेण युतायाञ्च यदि स्नाति जनः[५०] पुनः ॥७८॥
दशाश्वमेधजं प्राप्य रुद्रलोकं व्रजेन्मुदा। सौभाग्यदे महातीर्थे स्नानात्पापैर्विमुच्यते ॥७९॥
मधोः कृष्णत्रयोदश्यां स्नानाद् याति परां गतिम्[५१]।
भाग्यहीना च या नारी स्नानाद् भाग्यवती भवेत्[५२] ॥८०॥
पतिप्रिया सुन्दरी सा[५३] भवेज्जन्मनि जन्मनि। कुबेराख्ये महातीर्थे चतुर्दश्यां मधोर्द्वयोः ॥८१॥
स्नानाद् कुबेरतुल्यौजा भवेदिह महाधनः। पूर्णिमायाममावास्यां स्नाता तत्र त्रिमासतः ॥८२॥
इह लोके धनं भुक्त्वा रुद्रधनाधिपो भवेत्। गौरीतीर्थेऽबला श्रेष्ठा संस्नाति विधिवद्यदि ॥८३॥
ज्येष्ठे सिते तृतीयायां तस्याः पुण्यं फलं शृणु। नारीणां सा भवेच्छ्रेष्ठा सर्वपापैर्विवर्जिता ॥८४॥
पतिपुत्रान्वितेहाऽन्ते रामा गौरीपुरं व्रजेत्। गौरीतीर्थात्परं तीर्थं नास्ति ज्ञेयं सुदुर्लभम् ॥८५॥
नारीणां मनसा यद् यद् वाञ्छ्यते तत् फलप्रदम्[५४]।

---

हस्तानक्षत्रले युक्त भएको दशमीका दिन बुद्धि भएको जुन मानिसले यहाँ स्नान गर्छ करोडौं गाई दान गरेको फल प्राप्त गरेर त्यो दुर्गाको लोकमा जान्छ। मानिसहरूले कोषोदक नाम गरेको महातीर्थमा दुबै पक्षको पञ्चमीका दिन स्नान गर्नुपर्छ। त्यसो गऱ्यो भने जन्मभरि गरेका पापबाट ती मुक्त हुन्छन्। ज्येष्ठानक्षत्रले युक्त भएको दशमी तिथिका दिन यदि कसैले स्नान गर्छ भने त्यसले दश अश्वमेध यज्ञ गरेको फल प्राप्त गरी आनन्दसित रुद्रलोक जान पाउँछ ॥७६-७८॥

चैत्रकृष्ण त्रयोदशीका दिन सौभाग्यद नाम गरेको महातीर्थमा स्नान गर्ने व्यक्ति पापहरूबाट मुक्त हुन्छ, त्यो परमगतिमा पुग्छ। कुनै स्त्री अभागिनी छ भने त्यस तीर्थमा स्नान गरेपछि त्यो सौभाग्यवती हुन्छे, जन्म-जन्ममा पतिको प्यारी र सुन्दरी बन्न पाउँछे। चैत्रमहिनाका दुबै चतुर्दशीका दिन कुबेर नाम गरेको महातीर्थमा स्नान गऱ्यो भने त्यसले यस संसारमा कुबेरजस्तै तेजिलो र धनी हुन पाउँछ। पूर्णिमा र अमावास्याका दिन तीन महिनासम्म त्यस तीर्थमा स्नान गऱ्यो भने त्यसले यस लोकमा धनको उपभोग गरेर शिवजीका ढुकुटीको मालिक बन्न पाउँछ ॥७९-८२॥

कुनै अबला नारीले ज्येष्ठशुक्ल तृतीयाका दिन गौरीतीर्थमा विधिपूर्वक स्नान गरी भने त्यसको फल सुन। त्यो सम्पूर्ण पापबाट मुक्त भएर श्रेष्ठ नारीका रूपमा रहन्छे। यस लोकमा पति र पुत्रले युक्त भएर अन्त्यमा गौरीको लोकमा जान पाउँछे। स्त्रीजातिहरूका निमित्त गौरीतीर्थभन्दा ठूलो अर्को तीर्थ छैन। यसले नारीहरूले मनमा चिताएको सबै कामना एकैचोटि पूर्ण गरिदिन्छ ॥८३-८५½॥

---

४८. स्नायते यदि धीमता, इति न.सं.पु.पाठः।
४९. जनार्जितैनसा, इति न.सं.पु.पाठः।
५०. संस्नायते, इति न.सं.पु.पाठः।
५१. स याति परमां गतिम्, इति न.सं.पु.पाठः।
५२. अभागिनी सदा चेत् स्त्री स्नात्वा सौभागिनी भवेत्, इति न.सं.पु.पाठः।
५३. सुन्दरी सा पतिप्रेमा, इति न.सं.पु.पाठः।
५४. नारीणां कामदं शश्वन्मनसा यद्यदीप्सितम्, इति न.सं.पु.पाठः।

तीर्थराजस्य माहात्म्यं शृणु वच्मि विरूपदृक् ॥८६॥

त्रयाणाञ्च विशेषेण आर्यातीर्थस्य वै पुनः ।

अध्यायेऽस्मिन्खलु नरवरा धीर शृण्वन्ति भक्त्या

तीर्थानां ये विपुलवरदं सन्माहात्म्यञ्च शश्वत् ।

तेषु स्नानात् फलति भुवने पुण्यराशिश्च यावान्[५५]

तं तावन्तं पशुपकृपया भाग्यवन्तो लभन्ते[५६] ॥८७॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां तीर्थानां माहात्म्यं नाम द्विषष्ट्युत्तरशततमोऽध्यायः ॥१६२॥

---

हे विरूपाक्ष ! तीर्थराजको माहात्म्य विशेष गरी तीन किसिमका तीर्थ र आर्यातीर्थको माहात्म्य म बताउँछु, सुन ॥८६½॥

हे धैर्यशाली विरूपाक्ष ! यस अध्यायमा वर्णन गरिएको वरदायक माहात्म्य एकपटक मात्रै पनि मानिसहरूले सुने भने ती ती तीर्थमा स्नान गर्दा जे जस्तो फल प्राप्त हुन्छ, ती सबै प्राप्त गर्छन् । यो अध्याय पाठ गर्नेले पनि त्यस्तै फल पाउँछ ॥८७॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा विभिन्न तीर्थहरूको माहात्म्यनामक एकसय बैसट्ठिऔं अध्याय पूरा भयो ।

---

५५. तेषु स्नानाद्धृदयवरदं सन्ति पुण्यानि यावत्, इति न.सं.पु.पाठः ।

५६. प्राप्नोत्यार्यस्तदखिलफलं पाठकोऽस्यैव तद्वत्, इति न.सं.पु.पाठः ।

# त्रिषष्ट्युत्तरशततमोऽध्यायः

वाग्वतीसङ्गमस्थमहिममयतीर्थवर्णनम्

नेमुनिरुवाच

मृगोदके महातीर्थे कार्त्तिकस्याऽष्टमीतिथौ। यः स्नाति[१] विधिवद् भक्त्या मुच्यते पशुजन्मभिः ॥१॥
कृष्णाष्टम्यां ततस्तस्यां रुद्रात्मा स्नाति वै[२] यदि। यो व्याप्य कार्तिकं मासं तस्य पुण्यफलं शृणु ॥२॥
शताश्वमेधजं पुण्यं वाजपेयोद्भवं तथा। लब्ध्वा सर्वतनुं त्यक्त्वा[३] रुद्रलोके महीयते ॥३॥
खर्वरिकामहातीर्थे नवम्यां कार्त्तिकस्य च। यः स्नाति[४] कृष्णपक्षस्य तस्य पुण्यफलं शृणु ॥४॥
नरदेहार्जितैः पापैः स मुच्यते पुरा कृतैः। गवां कोटिफलं प्राप्य रुद्रलोके महीयते ॥५॥
आर्यातीर्थे महापुण्ये त्रिवेणीसङ्गमे शुभे। स्नातव्यं कार्त्तिके मासि सर्वपर्वसु यत्नतः ॥६॥
तन्मासं यो मुदा व्याप्य श्रद्धया स्नाति धीयुतः[५]। पूर्णिमायां विशेषेण तस्य पुण्यफलं शृणु ॥७॥
चतुरशीतिलक्षेषु जन्मस्वर्जितकिल्विषैः[६]। स्नानाद्विमुच्यते सद्यः पूर्णिमायां विशेषतः ॥८॥
ब्रह्महत्यादिभिः सर्वैर्महापापैः प्रमुच्यते। पातकैः पञ्चभिश्चैव स्नाति संवत्सरं तु यः[७] ॥९॥
विधवा सधवा वापि या काचित्स्नाति साऽबला[८]। मासरात्कार्त्तिकं व्याप्य तस्याः पुण्यफलं शृणु ॥१०॥
सप्तजन्मार्जितैः पापैर्वाक्कायमानसोद्भवैः। नेत्रार्जितैश्च बालघ्नैश्चतुर्दश्यां हि मुच्यते ॥११॥

---

## अध्याय – १६३

वाग्वतीको सङ्गममा रहेका महिमामय तीर्थहरूको वर्णन

नेमुनिले भन्नुभयो– कार्तिकमासको अष्टमी तिथिका दिन मृगोदक नाम गरेको महातीर्थमा सभक्ति विधिपूर्वक जसले स्नान गर्छ त्यो अनेकौं पशुजन्मबाट मुक्त हुन्छ। कार्तिक कृष्ण अष्टमीका दिन रुद्र नै बनेर यदि स्नान गऱ्यो भने त्यो रुद्र नै बन्छ। जसले कार्तिकभरि स्नान गर्छ त्यसको पुण्य फल सुन। त्यस तीर्थमा स्नान गर्ने व्यक्तिले सय अश्वमेध र वाजपेय यज्ञ गरेको सबै पुण्य प्राप्त गरेर शरीर छोडेपछि रुद्रलोकमा ससम्मान बस्न पाउँछ॥१–३॥

कार्तिक कृष्ण पक्षको नवमी तिथिका दिन खर्वरिका महातीर्थमा जसले स्नान गर्छ त्यसको पुण्यफल सुन। त्यो व्यक्ति मानिसको शरीरले अघि गरेका सम्पूर्ण पापबाट मुक्त हुन्छ, करोडौं गाई दान गरेको फल प्राप्त गरेर रुद्रलोकमा ससम्मान बस्न पाउँछ। त्रिवेणीसङ्गममा अवस्थित अत्यन्त पुण्यदायी आर्यातीर्थमा कार्तिकमहिनाका सबै पर्वमा विशेष प्रयासका साथ स्नान गर्नुपर्छ। कार्तिक महिनाभरि विशेष गरी पूर्णिमाका दिन प्रसन्न हुँदै जुन बुद्धिमान्ले यहाँ स्नान गर्छ त्यसको पुण्यफल सुन ॥४–७॥

विशेष गरेर पूर्णिमाको दिन त्यस तीर्थमा स्नान गऱ्यो भने चौरासी लाख जुनीमा लागेका पापहरूबाट मानिस तुरुन्त मुक्त हुन्छ। जसले एक वर्षसम्म स्नान गर्दछ त्यसले ब्रह्महत्या आदि गरिएका सबै महापाप र अन्य पाँचथरी पापबाट तुरुन्तै मुक्ति पाउँछ। कुनै विधवा अथवा सधवा नारीले कार्तिक महिनाभरि स्नान गरी भने त्यसको पुण्यफल सुन। उक्त तीर्थमा चतुर्दशीका दिन स्नान गऱ्यो भने वचन, शरीर र मनले सातजन्मसम्म गरेका पापहरू, आँखाबाट भएका पापहरू र बालहत्याजन्य पापहरूबाट मुक्ति पाउँछ ॥८–११॥

---

१. स्नायते, इति न.सं.पु.पाठः।
२. स्नायते, इति न.सं.पु.पाठः।
३. त्यज्य, इति न.सं.पु.पाठः।
४. स्नायते, इति न.सं.पु.पाठः।
५. स्नायते यत्र धीमता, इति न.सं.पु.पाठः।
६. लक्षराणां चतुराशीनां जन्मार्जितैश्च किल्विषैः, इति न.सं.पु.पाठः।
७. पातकैः पञ्चभिः सद्यः पूर्णिमायां विशेषतः, इति न.सं.पु.पाठः।
८. स्नायतेऽबला, इति न.सं.पु.पाठः।

भर्तुश्छन्दोद्भवैनोभिर्विमुक्ता सुन्दरी भवेत्। दीर्घजीवी पतिस्तस्याः पुत्रवती धनान्विता ॥१२॥
सीमन्ते भूषिता सा च[९] सिन्दूरैः सततं ततः। देहान्ते च विमानेन चार्यालोके वसेन्मुदा ॥१३॥
नारायणमहातीर्थे द्वादश्यां कार्त्तिके द्वयोः। स्नात्वा मुक्तो महापापैर्विष्णुसायुज्यमाप्नुयात् ॥१४॥
पावनिकाख्ये तीर्थे तद् द्वितीयायां जलाप्लवात्। गोसहस्रफलं प्राप्य रुद्रलोकं स गच्छति ॥१५॥
ततोऽगस्त्यमहातीर्थे स्नातकस्य फलं शृणु। भाद्रशुक्लद्वितीयायां संक्रान्त्यां वा विशेषतः ॥१६॥
स्नात्वाऽसावन्त्यजो वापि मुनिराजप्रसादतः। लब्ध्वा विप्रतनुञ्चाऽन्ते ह्यगस्त्यभवनं व्रजेत् ॥१७॥
नीलकण्ठे महातीर्थे स्नातव्यं पूर्णिमादिने। ज्येष्ठे सितदशम्याञ्च तस्य पुण्यफलं शृणु ॥१८॥
नीलकण्ठे फलं यावत्स्नानदानजपोद्भवम्। गवां कोटिफलं प्राप्य शिवलोके महीयते ॥१९॥
वासुकिसंज्ञके तीर्थे[१०] पञ्चम्यां श्रावणस्य च। स्नात्वा नागभयं त्यक्त्वा विष्णुलोके महीयते ॥२०॥
गोखुराख्ये महातीर्थे श्रावणीपूर्णिमादिने। गोसहस्रफलं प्राप्य स्नाता गच्छति शाङ्करम् ॥२१॥
भृगुपतनतीर्थे यः स्नातकः सर्वपर्वसु। अश्वमेधफलं प्राप्य शक्रलोकं प्रगच्छति ॥२२॥
वाग्वत्या उद्भवो यत्र तत्रागत्य दिवौकसः[११]। सम्भूयाऽत्र मुदा सस्नुर्देवघट्टस्ततः श्रुतः ॥२३॥
देवघट्टमहातीर्थे सङ्क्रान्त्यां मकरस्य च। सर्वदिवार्चने पुण्यं प्राप्य स्नाता व्रजेद् दिवम् ॥२४॥
सहस्रात्मा विधिर्भूत्वा सस्नौ चाऽत्र मुदा भृशम्। ब्रह्मसहस्रतीर्थे तत्सर्वलोके त्विति श्रुतम् ॥२५॥

---

हे विरूपाक्ष ! त्यस तीर्थमा स्नान गर्ने नारीले पतिको आशय अनुरूप काम नगर्दा लागेको पापबाट मुक्ति पाउँछे। त्यसको पति दीर्घजीवी हुन्छ, त्यो पुत्रवती र धनवती हुन्छे। त्यसको शिरमा सधैँ सिन्दूर बसिरहन्छ, मरेपछि विमानमा चढेर देवीको लोकमा जान्छे र आनन्दसित बस्छे। कार्तिकमहिनाको दुबै पक्षको द्वादशीका दिन नारायणमहातीर्थमा स्नान गर्‍यो भने उसले ठूलो पापबाट मुक्ति पाएर विष्णुसायुज्य प्राप्त गर्छ अर्थात् ऊ विष्णुमा नै लीन हुन्छ ॥१२-१४॥

कार्तिकमहिनाको द्वितीया तिथिका दिन पावनिका नाम गरेको तीर्थमा जसले स्नान गर्छ त्यो व्यक्ति हजार गाई दान दिएको फल प्राप्त गरेर रुद्रलोक जान्छ। त्यसपछि अगस्त्यमहातीर्थ आउँछ। त्यसमा विशेष गरी भाद्रशुक्ल द्वितीया अथवा सङ्क्रान्तिका दिन स्नान गर्ने मानिसले के फल पाउँछ, सुन्नुहोस्। शूद्र नै भए पनि त्यस तीर्थमा स्नान गर्ने व्यक्ति अगस्त्य मुनिको अनुकम्पाले गर्दा ब्राह्मणको शरीरलाई प्राप्त गरेर अगस्त्यलोकमा जान्छ। जेठमहिनाको शुक्लदशमी र पूर्णिमाको दिन नीलकण्ठमहातीर्थमा स्नान गर्ने व्यक्तिले पाउने फल सुन्नुहोस् ॥१५-१८॥

नीलकण्ठतीर्थमा स्नान, दान तथा जप गर्‍यो भने करोडौँ गाई दान गरेको फल प्राप्त गरेर त्यो व्यक्ति शिवलोकमा ससम्मान बस्न पाउँछ। वासुकि नाम गरेको तीर्थमा श्रावण पञ्चमीका दिन स्नान गर्‍यो भने नागको भयबाट मुक्त हुन्छ र विष्णुलोकमा ससम्मान बस्न पाउँछ। श्रावण पूर्णिमाको दिन गोखुर नाम गरेको महातीर्थमा स्नान गर्ने व्यक्तिले हजार गाई दान गरेको फल प्राप्त गरेर शिवलोकमा जान पाउँछ। भृगुपतन नाम गरेको तीर्थमा सबै पर्वमा जसले स्नान गर्छ त्यो अश्वमेध यज्ञ गरेको फल प्राप्त गरेर इन्द्रलोकमा पुग्छ ॥१९-२२॥

वाग्वती उत्पत्ति भएको जुन स्थलमा आएर देवताहरूले एकत्रित भई सहर्ष स्नान गरेका थिए, त्यसै समयदेखि त्यो स्थल देवघट्ट नामले प्रसिद्ध भयो। देवघट्टमहातीर्थमा मकरसङ्क्रान्तिका दिन स्नान गर्ने व्यक्तिले सम्पूर्ण देवतालाई पूजा गरेको पुण्यफल प्राप्त गरेर स्वर्ग जान पाउँछ। सहस्रप्राणीका आत्मा भएका ब्रह्माजीले यसै ठाउँमा खूबसित प्रसन्न भएर स्नान गर्नुभएको थियो। त्यसैले संसारमा यसको नाम ब्रह्मसहस्र तीर्थ भयो ॥२३-२५॥

---

९. ललाटे भूषिता तस्याः, इति न.सं.पु.पाठः।
१०. वासुकिनामतीर्थेऽस्मिन्, इति न.सं.पु.पाठः।
११. वाग्वत्यामुद्भवे यत्र यदेहागत्य निर्जराः, इति न.सं.पु.पाठः।

ब्रह्मसहस्रतीर्थे यः प्रतिपदि शुचेः सिते। सर्वमेधफलं प्राप्य स्नात्वा ब्रह्मपदं व्रजेत् ॥२६॥
सहस्रात्मा हरिर्भूत्वा वाग्वत्याञ्च पुरा यदा। उद्भूता वाग्वती सस्नौ तस्मादेवेति संश्रुतम् ॥२७॥
विष्णुसहस्रतीर्थेऽस्मिन् द्वादश्याञ्च द्वयोः शुचेः। मेरुदानफलं प्राप्य विष्णुलोकं स गच्छति ॥२८॥
वाग्वती सा यदोद्भूता सहस्रात्मा मुदा हरः। सस्नौ हि तद्दिने तस्माद्रुद्रसहस्रमाश्रुतम् ॥२९॥
रुद्रसहस्रतीर्थेऽस्मिंश्चतुर्दश्यां द्वयोः शुचेः। गवां कोटिफलं प्राप्य स्नात्वा गच्छति शाङ्करम् ॥३०॥
सूर्यभागामहातीर्थे संस्नाति[१२] यो रवौ हि वा। सङ्क्रान्तिषु च सर्वासु तस्य पुण्यफलं शृणु ॥३१॥
सर्वजन्मनि निष्पापः पूर्वपापैर्विवर्जितः। दशकोटिगवां प्राप्य सूर्यलोके महीयते ॥३२॥
चन्द्रभागामहातीर्थे पूर्णिमायाञ्च सर्वशः। संस्नाति[१३] यश्च सोमे वा तस्य पुण्यफलं शृणु ॥३३॥
सर्वरोगैर्विनिर्मुक्तो भवेज्जन्मनि जन्मनि। दशाश्वमेधजं प्राप्य चन्द्रलोकं प्रगच्छति ॥३४॥
मनःकामे हि तीर्थे यो दशम्यां स्नानकृत्[१४] शुचेः। मनःकामफलं प्राप्य रुद्रलोके वसेत्सुखम् ॥३५॥
जिह्वालोलमहातीर्थे स्नात्वा षष्ठ्यां शुचेः सिते। मिथ्याशपथसम्भूतैः पापैर्मुक्तो व्रजेच्छिवम् ॥३६॥
अनन्ताख्ये च तीर्थे यः पञ्चम्यामसिते मधोः। सर्वजन्मोद्भवैः पापैः स्नातो मुक्तः पुराकृतैः ॥३७॥
बालश्मशानतीर्थे यः प्रतिपदि मधोः पुनः। बालदोषैर्विनिर्मुक्तः स्नातो बाल्येऽविपद्यते ॥३८॥
भैरवाख्ये महाकुण्डे सर्वपापैर्विवर्जितः। राधकृष्णचतुर्दश्यां स्नातो गच्छति शाङ्करम् ॥३९॥
जलेश्वरे महातीर्थे चाऽष्टम्यां माधवस्य च। उभयोश्चैव निष्पापः स्नातो याति शिवालयम् ॥४०॥

---

जसले आषाढ शुक्ल प्रतिपदाको दिन ब्रह्मसहस्र तीर्थमा स्नान गर्छ त्यो सम्पूर्ण यज्ञ गरेको फल प्राप्त गरेर ब्रह्मपदमा जान्छ। भगवान् विष्णुले सहस्ररूप धारण गरेर अघि वाग्वतीमा स्नान गर्नुभएको थियो। त्यसैबाट उत्पन्न भएकाले यिनको नाम वाग्वती रह्यो। विष्णुसहस्र नाम गरेको यस तीर्थमा आषाढको दुबै पक्षको द्वादशीका दिन जसले स्नान गर्छ उसले सुमेरु पर्वत दान गरेको फल प्राप्त गर्छ र त्यो विष्णुलोकमा जान्छ ॥२६–२८॥

वाग्वती जुन दिन पैदा भइन् त्यसै दिन शङ्करले सहस्ररूप धारण गरेर आनन्दसित त्यसमा स्नान गर्नुभयो। त्यसैले त्यस तीर्थलाई रुद्रसहस्र भनियो। यस रुद्रसहस्र तीर्थमा आषाढ महिनाको दुबै पक्षको चतुर्दशीका दिन स्नान गर्ने व्यक्तिले करोडौं गाई दान गरेको फल पाउँछ र शङ्करलोक जान्छ। जसले आइतबारको दिन अथवा सबै सङ्क्रान्तिका दिन सूर्यभागामहातीर्थमा स्नान गर्छ त्यसको फल सुन्नुहोस्। त्यो व्यक्ति सबै जन्ममा गरेका पापहरूबाट मुक्त हुन्छ, दश करोड गाई दान गरेको फल पाउँछ र अन्त्यमा ससम्मान सूर्यलोकमा बस्न पाउँछ ॥२९–३२॥

सोमबारको दिन अथवा सबै पूर्णिमाको दिन जसले चन्द्रभागा महातीर्थमा स्नान गर्छ त्यसको पुण्यफल सुन। त्यो व्यक्ति प्रत्येक जन्ममा सबै रोगबाट मुक्त हुन्छ। दशवटा अश्वमेधयज्ञ गरेबराबरको फल प्राप्त गरेर ऊ चन्द्रलोकमा जान्छ। जसले आषाढदशमीको दिन मनःकाम नाम गरेको तीर्थमा स्नान गर्छ त्यो मनले चिताएको फल प्राप्त गरेर आनन्दसित रुद्रलोकमा बस्न पाउँछ। आषाढ शुक्ल षष्ठीका दिन जसले जिह्वालोल नाम गरेको महातीर्थमा स्नान गर्छ त्यो व्यक्ति भूठो किरिया खाँदा लागेको पापबाट मुक्त भएर शिवलोकमा जान्छ ॥३३–३६॥

अनन्त नाम गरेको तीर्थमा चैत्रकृष्ण पञ्चमीका दिन जसले स्नान गर्छ त्यो मानिस अघि सम्पूर्ण जन्ममा गरेका पापबाट मुक्त हुन्छ। फेरि जसले चैत्रप्रतिपदाको दिन बालश्मशान नाम गरेको तीर्थमा स्नान गर्छ त्यो बालककालमा गरेका दोषबाट मुक्त हुन्छ, त्यसले बाल्यावस्थामा विपत्ति भोग्नुपर्दैन। भैरव नाम गरेको महाकुण्डमा वैशाखकृष्ण चतुर्दशीका दिन स्नान गर्ने व्यक्ति सम्पूर्ण पापबाट मुक्त भएर शिवलोक जान्छ। जलेश्वर महातीर्थमा वैशाखमहिनाको दुबै पक्षको अष्टमीका दिन स्नान गर्ने व्यक्ति पापबाट मुक्त भएर शिवलोक जान्छ ॥३७–४०॥

---

१२. स्नायते, इति न.सं.पु.पाठः।
१३. स्नायते, इति न.सं.पु.पाठः।
१४. स्नायते, इति न.सं.पु.पाठः।

गुह्येश्वरीमहातीर्थे नवम्यामाश्विनस्य च। उभयोः स्नाति यो[१५] भक्त्या तस्य पुण्यफलं शृणु ॥४१॥
सर्वमेधफलं प्राप्य पुमान् याति हरालयम्। सर्वभोग्यसुखं भुक्त्वा नारी याति शिवालयम् ॥४२॥
आश्विनस्य चतुर्दश्यां स्नाति वैनायके च यः[१६]। निर्विघ्नं तद्भवेत्कार्यं सर्वं स्नातुर्निरन्तरम् ॥४३॥
पशुगणमहातीर्थे वैशाखसप्तमीदिने। पशुपाशैर्विनिर्मुक्तः स्नाता याति त्रिविष्टपम् ॥४४॥
श्लेष्मान्तकं ततस्तीर्थं राधकृष्णाष्टमीतिथौ। बहुपापं परित्यज्य स्नाता याति वृषालयम् ॥४५॥
ताम्रचूडे ततस्तीर्थे द्विषष्ठ्योर्माधवस्य च। षष्टिसंवत्सरोद्भूतैः पापैः स्नाता विमुच्यते ॥४६॥
उत्तरवाहिनीतीर्थे चतुर्थ्यां माधवस्य च। शतगवां फलं प्राप्य रुद्रलोके महीयते ॥४७॥
विष्णुना च धृता पृथ्वी यदा वराहरूपिणा। तच्चैलात्पतिताम्भो यच्चैलगङ्गेति विश्रुता ॥४८॥
चैलगङ्गामहातीर्थे राधकृष्णतृतीयके। तज्जन्मदिवसे स्नातुः फलं शृणु विरूपदृक् ॥४९॥
सहस्रजन्मजैः पापैः स्नानान्मुक्तो हि तत्क्षणात्। कामतो हि कृतैः पापैः स्त्रीभिर्विशेषतो द्विज ॥५०॥
ये सहस्रमखाः सन्ति वाजपेयादयः श्रुताः[१७]। तत्फलानि समादाय विष्णुलोकं स गच्छति ॥५१॥
हत्यामोचनतीर्थे च ज्येष्ठस्य दशमीयुते। सोमे हस्तान्विते स्नातुस्तस्य पुण्यफलं शृणु ॥५२॥
ब्रह्महत्यादिभिः पापैः विमुक्तः स्नातकः क्षणात्। गवां कोटिफलं प्राप्य रुद्रलोकं स गच्छति ॥५३॥
ब्रह्मणः पञ्चमं शीर्षं निहत्य पापवान् शिवः[१८]। तत्र स्नानाद्विमुक्तोऽसौ तद्धत्यया महेश्वरः ॥५४॥

---

आश्विन महिनाको दुबै पक्षको नवमी तिथिका दिन गुह्येश्वरी महातीर्थमा भक्तिपूर्वक स्नान गर्ने व्यक्तिले कस्तो पुण्यफल पाउँछ, त्यो सुन। त्यसमा पुरुष भए सम्पूर्ण यज्ञको पल प्राप्त गरेर शिवलोक जान्छ। स्त्री भए सम्पूर्ण सुखभोग गरेर शिवलोक जान्छे। विनायकतीर्थमा आश्विन चतुर्थीका दिन निरन्तर स्नान गर्‍यो भने उसका सबै कामहरू निर्विघ्न सम्पन्न हुन्छन् ॥४१-४३॥

वैशाखसप्तमीका दिन पशुगण महातीर्थमा स्नान गर्ने व्यक्ति पशु र पाशबाट मुक्त भएर स्वर्ग जान्छ। त्यसभन्दा पछि श्लेष्मान्तकमा वैशाखकृष्ण अष्टमीका दिन स्नान गर्ने व्यक्ति धेरै पापलाई त्यागेर शिवजीको लोकमा जान पाउँछ। वैशाखमहिनाको दुबै पक्षको षष्ठी तिथिका दिन ताम्रचूड तीर्थमा स्नान गर्ने व्यक्ति साठी वर्षसम्म गरेको पापबाट मुक्त हुन्छ। वैशाखमहिनाको चतुर्थी तिथिका दिन उत्तरवाहिनी तीर्थमा स्नान गर्ने व्यक्तिले सयगाई दान गरेको फल प्राप्त गरेर ससम्मान रुद्रलोकमा बस्न पाउँछ। जब वराहरूपधारी विष्णुले पृथ्वीलाई धारण गर्नुभयो त यसपछि उहाँको वस्त्रबाट जलधारा प्रवाहित भयो। त्यसैले यस तीर्थलाई चैलगङ्गा भनियो ॥४४-४८॥

हे विरूपाक्ष ! वैशाखकृष्ण तृतीयाको दिन अथवा आफ्नै जन्मदिनमा जसले चैलगङ्गा नाम गरेको महातीर्थमा स्नान गर्छ त्यसको फल सुन। हे ब्राह्मण ! त्यस तीर्थमा स्नान गर्ने मानिसले हजार जन्ममा गरेका पापबाट तुरुन्तै मुक्ति पाउँछ। विशेष गरी स्त्रीजातिहरूले जानी जानी गरेका पापबाट मुक्ति पाउँछन्। त्यहाँ स्नान गर्ने मनुष्यले हजारौँ वाजपेय आदि यज्ञबाट उत्पन्न भएको फल प्राप्त गरी विष्णुलोकमा जान पाउँछ ॥४९-५१॥

हत्यामोचन तीर्थमा हस्ता नक्षत्रले युक्त भएको ज्येष्ठ महिनाको सोमवार पर्ने दशमीका दिन स्नान गर्ने व्यक्तिले जुन पुण्यफल पाउँछ, त्यो सुन। त्यहाँ स्नान गर्ने व्यक्ति ब्रह्महत्या आदि गरिएका पापबाट तुरुन्त मुक्त हुन्छ। करोडौँ गाई दान गरेको फल प्राप्त गरेर त्यो शिवलोकमा जान्छ। ब्रह्माजीको पाँचौं शिर काटेर पापी हुनुभएका महन् देवता भगवान् शिव हत्यामोचन तीर्थमा स्नान गरेर ब्रह्माको हत्याजन्य पापबाट मुक्त हुनुभएको थियो ॥५२-५४॥

---

१५. स्नायते, इति न.सं.पु.पाठः। १६. विनायके च तीर्थेऽस्मिंश्चतुर्थ्यामाश्विनस्य च, इति न.सं.पु.पाठः।
१७. सहस्राणां मखोद्भूतान् वाजपेयांश्तथैव च, इति न.सं.पु.पाठः। १८. हतपापान्वितो हरः, इति न.सं.पु.पाठः।

कैलासाख्ये ततस्तीर्थे स्नातुस्तस्य फलं शृणु। ज्येष्ठकृष्णचतुर्दश्याममावास्यां विशेषतः ॥५५॥
सर्वयज्ञफलं प्राप्य सर्वतपःकृतं[१९] फलम्। समादाय स निष्पापः कैलासं हि प्रगच्छति ॥५६॥
हिमवतो महातीर्थे स्नाता स्वर्गं व्रजेन्मुदा। ज्येष्ठशुक्लचतुर्दश्यां प्राप्य स वै तपःफलम् ॥५७॥
द्वादश्याञ्च द्वयोश्चैत्रे युतायां हि बुधेन च। यो विष्णुपादुकातीर्थे स्नाति पुण्यफलं शृणु ॥५८॥
तत्तीर्थे खलु निष्पापः स्नाता पिण्डं ददाति वै। त्रिसप्तकुलमुद्धृत्य विष्णुलोकं प्रगच्छति ॥५९॥
भृगुपाते तनुं तीर्थे स्नातुर्देहः पतेद् यदि[२०]। सर्वजन्म परित्यज्य रुद्रलोकं व्रजेत्सुखी ॥६०॥
आषाढ्यां पूर्णिमायाञ्च चन्द्रतीर्थजलाप्लुतः। चन्द्रकान्तिमुखो भूत्वा भाग्यशाली नरी भवेत्[२१] ॥६१॥
आषाढसङ्क्रमे सौरे सूर्यतीर्थे जलाप्लुतः। सप्तजन्मार्जितैः पापैः स मुक्तो नाऽत्र संशयः ॥६२॥
गोकर्णेश्वरतीर्थे यः स्नाता रुद्रपुरं व्रजेत्। भाद्रकृष्णचतुर्दश्यामष्टम्याञ्च विशेषतः ॥६३॥
तथोत्तरगयातीर्थे स्नात्वा पिण्डं ददाति यः। विशेषात्तदमावास्यां तस्य पुण्यफलं शृणु ॥६४॥
मातुः पितुस्तथा बन्धोः श्वशुरस्य कुलानि च। समुद्धृत्य शतं साग्रं पितृलोकं स गच्छति ॥६५॥
गदाधरमहातीर्थे स्नात्वा फलं तथैव च। शतगुणं फलं प्राप्य विष्णुलोकं स गच्छति ॥६६॥
पितामहमहातीर्थे कोटिकोटिगुणं फलम्। कुलकोटिं समुद्धृत्य ब्रह्मलोकं व्रजेत्सुधीः ॥६७॥
चन्द्रभागामहातीर्थे स्नाता याति विधोः पुरम्। सोमार्कपूर्णिमायां वै सोमपानफलान्वितः ॥६८॥
नारदाख्ये ततस्तीर्थे सप्तम्यां श्रावणस्य च। मिथ्यापापैर्विनिर्मुक्तः स्नात्वा गच्छेत् त्रिविष्टपम् ॥६९॥

---

त्यसपछि कैलाश नाम गरेको तीर्थमा ज्येष्ठ कृष्ण चतुर्दशी र विशेषगरी अमावास्याको दिन स्नान गर्ने व्यक्तिले पाउने पुण्यफल सुन। सम्पूर्ण यज्ञ र तपस्याको फल प्राप्त गरेर त्यहाँ स्नान गर्ने व्यक्ति पापबाट मुक्त भई कैलाश जान्छ। ज्येष्ठशुक्ल चतुर्दशीका दिन हिमालयको महातीर्थमा स्नान गर्ने व्यक्ति तपस्याको फल पाएर सहर्ष स्वर्ग जान्छ । चैत्रमहिनाको दुबै पक्षको बुध नक्षत्रले युक्त भएको द्वादशीका दिन जसले विष्णुपादुका तीर्थमा स्नान गर्छ त्यसको पुण्यफल सुन। त्यस तीर्थमा स्नान गरेर पिण्ड दिने व्यक्ति पापबाट मुक्त हुन्छ र एकाइस कुलको उद्धार गरेर त्यो व्यक्ति विष्णुलोक जान्छ ॥५५-५९॥

त्यसपछि भृगुपाततीर्थमा स्नान गऱ्यो भने मरेपछि त्यो व्यक्ति जन्मनुपर्ने सबै जुनीलाई त्याग गरेर आनन्दसित रुद्रलोकमा गएर बस्छ। कुनैले आषाढपूर्णिमाको दिन चन्द्रतीर्थ जलमा स्नान गऱ्यो भने चन्द्रमाको कान्तिजस्तै उज्यालो मुख हुन्छ र अनुपम सौभाग्य पाउँछ। असारमहिनाको सङ्क्रान्ति तथा आइतबारका दिन जसले सूर्यतीर्थमा स्नान गर्छ त्यो व्यक्ति सम्पूर्ण जन्ममा गरेका पापबाट मुक्त हुन्छ, यसमा शङ्का छैन।विशेष गरी भाद्रकृष्ण चतुर्दशी र अष्टमीका दिन जसले गोकर्णेश्वर तीर्थमा स्नान गर्छ त्यो शिवलोक जान्छ ॥६०-६३॥

विशेष गरेर त्यसै महिनाको अमावास्याको दिन जसले उत्तरगयाको तीर्थमा स्नान गरेर पिण्ड दिन्छ, त्यसको पुण्यफल सुन। आमा, बाबु, मातृकुल, पितृकुल, ससुरा र तिनका अघिपछिका सयभन्दा बढी कुललाई नै उद्धार गरेर त्यो पितृलोकमा जान्छ। गदाधरमहातीर्थमा स्नान गर्ने मानिस सयगुणा फल प्राप्त गरेर विष्णुलोकमा जान्छ। पितामहमहातीर्थमा स्नान गर्ने व्यक्तिले करोडौं गुणा फल पाउँछ। करोडौं कुलको उद्धार गरेर त्यो विद्वान् ब्रह्मलोकमा पुग्छ। आइतबार, सोमबार अथवा पूर्णिमाको दिन चन्द्रभागानदीमा स्नान गर्ने व्यक्ति सोमपान गरेको फल प्राप्त गरेर चन्द्रलोकमा जान्छ। नारदतीर्थमा श्रावणको सप्तमीका दिन स्नान गर्ने व्यक्ति झूठो बोलेको पापबाट मुक्त भएर स्वर्ग जान्छ॥६४-६९॥

---

१९. सर्वं तपोद्भवम्, इति न.सं.पु.पाठः।
२०. भृगुपते ततस्तीर्थे स्नाता देहं पतेत्खलु, इति न.सं.पु.पाठः।
२१. सौभाग्यमतुलं लभेत्, इति न.सं.पु.पाठः।

ततः सप्तर्षितीर्थे यः सङ्क्रान्त्यां नभसो रवौ। सप्तजन्मार्जितैः पापैः स्नाता मुक्तो दिवं व्रजेत् ॥७०॥
कपोतगिरितीर्थे यो भाद्रशुक्लतृतीयके। स्नाता विकिल्विषः सद्यो याति माहेश्वरं पुरम् ॥७१॥
कान्तिभैरवतीर्थे यो नवम्यामाश्विनस्य च। देहजैः किल्विषैर्मुक्तः स्नाता याति हरालयम् ॥७२॥
वाग्वतीपतने तीर्थे नवम्यां कार्त्तिके सिते। गवां कोटिफलं प्राप्य स्नाता याति हरालयम् ॥७३॥
सम्भूता सा[२२] पवित्राङ्गी भूमौ सत्ये मनोरमा। सौन्दर्येण नदीश्रेष्ठा सुन्दरी नाम विश्रुता ॥७४॥
सुन्दरिकामहातीर्थे स्नाता याति शिवालयम्। मार्गकृष्णचतुर्दश्यां लब्ध्वा कोटिमखोद्भवम् ॥७५॥
विमलाम्बुमहातीर्थे नवम्यां स्नाति यो[२३] बुधः। पौषकृष्णनवम्यां वा तस्य पुण्यफलं शृणु ॥७६॥
कोटिजन्मार्जितैः पापैर्मुक्तः स्वर्णविमानगः। सर्वदानफलं प्राप्य रुद्रलोकं स गच्छति ॥७७॥
अप्सरोगणतीर्थे च पूर्णिमायां जलाप्लुता। कुरूपा स्त्री च या काचित्तस्याः पुण्यफलं शृणु ॥७८॥
भूत्वाप्सरस्तनोस्तुल्या चाह्लाद्यगुणराशिभिः[२४]। इह लोके सुखं भुक्त्वा चोमालोकं व्रजेत्सुखम् ॥७९॥
ब्रह्मसरस्वतीतीर्थे स्नाता तस्य फलं शृणु। सर्वपर्वसु यत्नेन चैत्रकस्य विशेषतः ॥८०॥
यच्च शताश्वमेधानां वाजपेयस्य वै तथा। कपिलाशतकोटीनां स्नानात्प्राप्नोति तत्फलम् ॥८१॥
स्वर्णतुलासहस्राणां दानाच्छतगुणं शतम्। सर्वयज्ञोद्भवं पुण्यं स्नाता प्राप्नोति तत्फलम् ॥८२॥
सर्वतीर्थेषु यत्पुण्यं सर्वव्रतेषु यत्पुनः। सर्वदेवार्चनाद् यच्च[२५] स्नाता प्राप्नोति तत्फलम् ॥८३॥
इह लोके सुखं भुक्त्वा यावज्जीवं कुलान्वितः। स्वर्णयानेन यात्यैशं देहान्ते स परात्परम् ॥८४॥

---

त्यसपछि जसले सप्तर्षितीर्थमा सङ्क्रान्ति र आइतबार स्नान गर्छ त्यो व्यक्ति सात जन्मसम्म गरेका पापबाट मुक्त भई स्वर्ग जान्छ। जसले कपोतगिरि तीर्थमा भाद्र शुक्ल तृतीयाका दिन स्नान गर्छ त्यो व्यक्ति पापबाट मुक्त भएर तुरुन्त शिवलोकमा जान्छ। कान्तिभैरव नाम गरेको तीर्थमा आश्विन नवमीका दिन जसले स्नान गर्छ त्यो मानिस शरीरका सम्पूर्ण पापबाट मुक्त भएर शिवजीको भवनमा पुग्छ ॥७०-७२॥

वाग्वती खसेको तीर्थमा कार्तिक शुक्लनवमीमा स्नान गर्ने व्यक्तिले करोडौँ गाई दान गरेको फल प्राप्त गर्छ र त्यो शिवलोकमा जान्छ। पवित्र अङ्ग भएकी अत्यन्त सुन्दर यी नदी सत्ययुगमा उत्पन्न भएकी हुन्। नदीमा श्रेष्ठ वाग्वतीनदीको सौन्दर्यले गर्दा ती नदी सुन्दरी नामले प्रसिद्ध भइन्। सुन्दरिका नाम गरेको महातीर्थमा मार्ग कृष्ण चतुर्दशीका दिन स्नान गर्ने व्यक्ति करोडौँ यज्ञ गरेको फल प्राप्त गरेर शिवलोकमा जान्छ। जुन बुद्धिमान् मानिसले पौष कृष्ण नवमीका दिन विमलाम्बुमहातीर्थमा स्नान गर्छ त्यसको पुण्यफल सुन। त्यो व्यक्ति करोडौँ जन्ममा गरेका पापबाट मुक्त भएर सम्पूर्ण दान गरेको फल प्राप्त गरी सुनको विमानमा चढेर रुद्रलोकमा जान्छ ॥७३-७७॥

कुरूपा कुनै स्त्रीले अप्सरोगणतीर्थमा पूर्णिमाको दिन स्नान गरी भने के पुण्यफल पाउँछे, त्यो सुन्नुहोस्। अप्सराको शरीरसित तुलना योग्य भएर आनन्ददायक सुन्दर गुणहरूले युक्त हुँदै यस लोकमा सुखभोग गरेर त्यो स्त्री उमालोकमा जान्छे। विशेष गरी चैत्रमहिनाका सबै पर्वमा ब्रह्मसरस्वती तीर्थमा स्नान गर्ने व्यक्तिले के फल पाउँछन्, त्यो कुरा सुन्नुहोस्। सय अश्वमेधयज्ञ, वाजपेययज्ञ र सय करोड कामधेनु गाई दान गर्नाले जुन फल प्राप्त हुन्छ त्यही फल यस तीर्थमा स्नान गर्ने व्यक्तिले प्राप्त गर्छ। हजारतोला सुन दान गर्दा जुन पुण्य पाइन्छ र सम्पूर्ण यज्ञ गर्दा जुन पुण्य प्राप्त हुन्छ यस तीर्थमा स्नान गर्ने व्यक्तिले त्यही पुण्य पाउँछ। सबै तीर्थमा स्नान गर्नाले जुन फल प्राप्त हुन्छ, सबै व्रत गर्दा जुन पुण्य प्राप्त हुन्छ, सबै देवताको पूजा गर्दा जुन पुण्य प्राप्त हुन्छ यस तीर्थमा स्नान गर्ने व्यक्तिले त्यही फल पाउँछ। त्यो साधक यस लोकमा बाँचुन्जेल सुखभोग गरेर मरेपछि परिवारसितै सुनको विमानमा चढेर उत्तम शिवलोकमा जान्छ ॥७८-८४॥

---

२२. कुतोत्थाना, इति न.सं.पु.पाठः।
२३. स्नायते, इति न.सं.पु.पाठः।
२४. तुलयाप्सरास्तनुर्भूत्वा चाह्लादसुन्दरैर्गुणैः, इति न.सं.पु.पाठः।
२५. सर्वदेवार्चनं पुण्यम्, इति न.सं.पु.पाठः।

तीर्थान्येतानि ते विप्र ! कथितानि मयाऽधुना। सङ्गमाश्चैव वाग्वत्या मनोवाञ्छाप्रदायकाः ॥८५॥
तीर्थेष्वेतेषु यो धीरः संस्नाति[२६] तद्धि पर्वसु। यद्यत्प्रोक्तं फलं प्राप्य शिवलोकं परं व्रजेत् ॥८६॥

स्कन्द उवाच

स्नात्वाऽसौ सर्वतीर्थेषु नैपालेषु घटोद्भव। अर्चयामास[२७] लिङ्गानि तत्क्षेत्रे खलु सर्वशः ॥८७॥
तस्थौ तत्र विरूपाक्षः पाशुपते समुद्यतः। शिवक्षेत्रे मुदा भक्त्या पशुपतिं प्रतोषयन्[२८] ॥८८॥
भूत्वा सिद्धो हि विप्रोऽसौ चाऽद्यापि कुम्भसम्भव। प्रसादात्तीर्थलिङ्गानां सिद्धैः सह प्रमोदते ॥८९॥
सिद्धर्षिर्नेमुनिः श्रेष्ठो मणिचूडाचलेऽद्यतः। अन्यैः सिद्धैः समन्तस्थौ वज्रां देवीं प्रतोषयन्[२९] ॥९०॥
कथितं ते मयेत्येतद्विरूपाक्षस्य कुम्भज। तीर्थयात्राटनं पुण्यं किं भूयः श्रोतुमिच्छसि ॥९१॥

तीर्थानां ये खलु नरवरा भक्तिभावान्विताश्च
माहात्म्यं वै परमसुखदं धीर शृण्वन्ति शश्वत् ।
तत्र स्नात्वाऽमृतमयजलेष्वेव यद् यत् फलं च
युक्ताः सन्तः परमपदवीं यान्ति तत्तत्फलैश्च[३०] ॥९२॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विरूपाक्षतीर्थयात्रायां वाग्वतीसङ्गमतीर्थानां माहात्म्यं नाम त्र्यषष्ट्युत्तरशततमोऽध्यायः ॥१६३॥

---

हे ब्राह्मणश्रेष्ठ विरूपाक्ष ! मैले तिमीलाई अहिले यी तीर्थहरू बताएँ। मनको कामना पूर्ण गर्ने वाग्वतीका सङ्गमस्थलहरूका बारेमा पनि बताएँ। यी तीर्थहरूमा ती ती पर्वतहरूमा जुन विद्वान् मानिसले स्नान गर्छ त्यसले जुन जुन फल पाउँछ भनिएको छ, ती ती फल प्राप्त गरेर उत्तम शिवलोक जान पाउँछ ॥८५-८६॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! त्यसपछि विरूपाक्षले नेपालमा रहेका सबै तीर्थहरूमा स्नान गरे। ती क्षेत्रमा रहेका सबैतिरका लिङ्गहरूको पूजा गरे। विरूपाक्ष त्यस पाशुपतक्षेत्रमा तत्परताका साथ पशुपतिको भक्तिपूर्वक सेवा गर्दै आनन्दसित बसे। हे अगस्त्य मुनि ! यी विरूपाक्षब्राह्मण आज पनि सिद्ध भएर बसेका छन्। तीर्थ र लिङ्गको अनुकम्पाबाट आज उनी सिद्धहरूका साथ आनन्द मनाइरहेका छन्। यसै समयदेखि आजसम्म पनि मणिचूड नाम गरेको पर्वतमा सिद्धऋषि भएका नेमुनि व्रजयोगिनीदेवीको सेवा गर्दै अरू सिद्धहरूका साथ बसिरहेका छन् ॥८७-९०॥

हे अगस्त्य मुनि ! मैले तिमीलाई विरूपाक्षको पवित्र तीर्थयात्राभ्रमण बताएँ, अब फेरि के सुन्न चाहन्छौ ? जुन मानिसहरूले भक्तिले युक्त भएर यी तीर्थको महत्त्व गाइएको अत्यन्त सुखदायक यो माहात्म्य एकपटक मात्रै भए पनि सुन्छन्, तिनीहरूले ती अमृतमय तीर्थमा स्नान गर्दा जुन जुन फल प्राप्त हुन्छन्, ती सबै प्राप्त गर्छन् र भगवती आर्याको परमपदमा पुग्छन् ॥९२॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डमा विरूपाक्षको तीर्थयात्राप्रसङ्गमा वाग्वतीको सङ्गममा रहेका विभिन्न तीर्थहरूको माहात्म्य वर्णन गरिएको एकसय त्रिसट्ठिऔं अध्याय पूरा भयो।

पराम्बा वाग्वादिनी भगवतीको असीम अनुकम्पाबाट पोरकनी पाल्पा निवासी पतिव्रताशिरोमणि स्वर्गीय माताश्री दिव्यलक्ष्मी ढकाल र सज्जनमुकुटमणि स्वर्गीय पिताश्री चूडामणि ढकालका कनिष्ठ पुत्र नेपाल संस्कृत विश्वविद्यालय सेवा आयोगका अध्यक्ष प्रा. डा. वेणीमाधव ढकालद्वारा गरिएको महर्षि वेदव्यासरचित स्कन्दमहापुराणअन्तर्गत हिमवत्खण्डको अभिनव सम्पादन एवं नरहरिनामक नेपाली भाषानुवादमा चौसट्ठी लिङ्गप्रकरण प्रकरण पूरा भयो।

---

२६. स्नायते, इति न.सं.पु.पाठः।
२७. अर्चितवाँश्च, इति न.सं.पु.पाठः।
२८. प्रसेवयन्, इति न.सं.पु.पाठः।
२९. प्रसेवयन्, इति न.सं.पु.पाठः।
३०. तत्तत्फलानि, इति न.सं.पु.पाठः।

प्रातः स्नातः स मुनिवचनान्मुञ्जवच्छेखरेऽसौ
भक्त्या दध्यौ निशि गिरिसुतां वाग्वतीसम्भवे वै ।
अभ्यर्च्यार्यां दितिसुतसुतां लब्धुकामो हि काम-
स्तद्वाञ्छां सा घटभव ददौ सिद्धकामोऽप्यभूत्स ॥

(हिमवत्खण्ड, अ. १७३, श्लो. १८)

अर्थ-

हे अगस्त्य मुनि ! नारदको वचनअनुसार प्रद्युम्नले बिहान मुञ्जवान् पर्वतको शिखरमा स्नान गरे। राति त्यसै ठाउँमा प्रभावती प्राप्तिको कामना गरेर पार्वतीको ध्यान र पूजा गरे। पार्वतीले तिनको इच्छा पूर्ण गरिदिनुभयो, उनको कामना सिद्ध भयो ॥१८॥

# चतुःषष्ट्युत्तरशततमोऽध्यायः

## वाग्वतीगङ्गाया महिमा

### अगस्त्य उवाच

नमस्ते भगवन् स्कन्द त्वत्प्रसादाच्छ्रुतं मया। नेपालस्य च माहात्म्यं सर्वपापविनाशनम् ॥१॥
वक्त्रारविन्दच्युतशीतलं ते सुधारसं प्राश्य सुशीतलोऽस्मि।
गङ्गोदकं घर्मकृशाङ्गिनो हिं[1] यथैव पङ्कानि विदीर्णितानि[2] ॥२॥
भूयोऽहं श्रोतुमिच्छामि त्वत्तः सर्वज्ञदेहजात्[3]। माहात्म्यं खलु वाग्वत्याः को मुक्तो वद मे प्रभो ॥३॥
पुरी पाशुपती ख्याता सत्यवती कथं भवेत्। तस्यां सुवर्णमय्यां किं विमुक्तः कोऽपि विद्यते ॥४॥

### स्कन्द उवाच

आसीन्म्लेच्छः पुरा कश्चिद्वितण्डो धनवाञ्छ्रुतः। कुन्दाचले ह्यवात्सीत् स परिवारैः समं सुखम् ॥५॥
तस्य दासोऽनिशं क्रोधी रुक्षो नाम धनुर्धरः। मृगयाभ्रमणोऽरण्ये चाऽतिक्रूरो बलान्वितः ॥६॥
सोऽजस्रं हतवाञ्जन्तून् पशुपक्षिमृगान्मुने। जलजान्निर्दयः क्षुद्रान्पौगण्डनिर्धनावधि ॥७॥
अलाभे मृगयाजन्तौ निराशो गतवान्गृहे। निर्भर्त्स्याशु वितण्डस्तं लगुडेन ह्यताडयत् ॥८॥
निरशनो हि तद्रात्रौ हा कष्टेति रुरोद सः। क्व गच्छामीति चात्मानं धिक् कुर्वन् परसेवकः[4] ॥९॥

---

## अध्याय – १६४

## वाग्वतीगङ्गाको महिमा

अगस्त्य मुनिले भन्नुभयो – हे भगवन्! हे कार्तिक स्वामी! हजुरको अनुकम्पाबाट सम्पूर्ण पापलाई नाश गर्ने नेपालको माहात्म्य मैले सुनें, हजुरलाई नमस्कार छ। जसरी गङ्गाको जलले हिलोलाई हटाउँछ, गर्मीले पातलो शरीर भएका पुरुषलाई ठण्डा तुल्याउँछ, त्यस्तै हजुरको मुखारविन्दबाट निस्किएको शीतल वाणीरूपी अमृतरस पान गरेर म पनि अत्यन्त शीतल भएको छु। जसरी सूर्यको तापले दुब्लाएका मानिसहरू शीतल गङ्गाजल पान गरेपछि आफू तथा आफ्नो हृदय पनि शीतल भएको महसुस गर्छन् र आफूलाई सौभाग्यशाली ठान्दछन् त्यसै गरी मेरो पनि पापपङ्क सबै पखालिएर गएको छ ॥१–२॥

हे शङ्करपुत्र कार्तिकेय! हे प्रभु! हजुरबाट म फेरि वाग्वतीको माहात्म्य सुन्न चाहन्छु। त्यहाँ को मुक्त भएको थियो ? बताउनुहोस्। भगवान् पशुपतिकी प्रिय नगरी पाशुपतीपुरीका नामले प्रसिद्ध थिइन्। तिनलाई किन सत्यवती भनियो ? सुवर्णमयी पाशुपती पुरीमा आएर को मुक्त भएको थियो ? मलाई सविस्तार बताउनुहोस् ॥३–४॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि! अघि वितण्ड नाम गरेको कुनै धनवान् म्लेच्छ थियो। त्यो कुन्दाचलमा आफ्ना परिवारका साथ सुखसित बस्दथ्यो। रुक्षनामक त्यसको नोकर धनुर्धारी रुखो मिजासको र रिसाहा थियो। बलियो र अत्यन्त क्रूर स्वभावको त्यो नोकर जङ्गलमा शिकारका लागि घुम्ने गर्थ्यो। त्यसले पशुपक्षी, मृग, जलजन्तु, छ वर्षदेखि दश वर्षसम्मका बालकहरू र गरीबलाई पनि निर्दयी भएर मार्ने गर्थ्यो। एकपल्ट त्यसले शिकारको लागि प्राणी भेटेन। निराश भएर घर फर्क्यो। आफ्नो मालिकलाई त्यस वितण्डले तुरुन्तै हप्कायो र लठ्ठीले हान्यो। त्यस रात त्यसले केही खाएन। ऊ हा कष्ट! भनेर रोयो। एक्लै कहाँ जाऊँ ? भन्दै उसले धिक्कारमय जीवन धारणा गरेको महसुस गऱ्यो ॥५–९॥

---

१. धर्मकृशाङ्गिनो हि, इति न.सं.पु.पाठः।
२. यथैव पङ्कानि विदीर्णितानि, इति न.सं.पु.पाठः।
३. त्वयि सर्वज्ञसूनुके, इति न.सं.पु.पाठः।
४. चैकाकी धिग्जीवन्परसेवकः, इति न.सं.पु.पाठः।

तन्निशायां गृहं त्यक्त्वा क्षेत्रं पाशुपतं ययौ। धिगिति जीवनं कृत्वा पराशः परसेवकः ॥१०॥
कार्त्तिक्यां पूर्णिमायां स पञ्चत्वं प्राप्तवान् मुने। रेवत्या संयुतायाञ्च बुधे तत्र निशान्तरे ॥११॥
तद्दिने प्रेरणार्थाय तमानेतुं हि किङ्करान्। निदेशयति कालेशः व्याचष्ट वचनं च तान् ॥१२॥

चित्रगुप्त उवाच

भो यम धर्मराट् मृत्यो काल वैवस्वतान्तक। दध्नौदुम्बरनीलार्य परमेष्ठिन् वृकोदर ॥१३॥
चित्रभूतघ्न भो वत्स भवद्भिरवलोक्यताम्[५]। पट्टे कृतानि तस्यैव चित्राणि किल्विषाणि च ॥१४॥
अहोऽद्भुतानि कर्माणि म्लेच्छस्य पापिनः प्रभो। केवलं सञ्चितं पापं नास्ति धर्मो मनागपि ॥१५॥
चतुःसहस्रसङ्ख्याकाः[६] तेन चतुष्पदा हताः। तथैव पक्षिणां संख्या तल्लक्षं जलजन्मिनाम् ॥१६॥
क्रूरेण निहतं सर्वं वृद्धान् यूनोऽर्भकानपि। जले स्थले स गगने हतवान् निर्दयं रुषा[७] ॥१७॥
अद्यैवानीय तं पापं यातनापूर्वकं पथि। सन्तर्ज्य ब्रह्मदण्डेन बद्ध्वा सन्ताड्य तं मुहुः[८] ॥१८॥
वल्कलपक्षकेशानां यावत्संख्या च विद्यते। तावत्कालं च पापं तं नरकेषु पचन्तु भोः[९] ॥१९॥

स्कन्द उवाच

एवं प्रदर्श्य तान् पट्टं प्रास्थापयद् घटोद्भव। बद्ध्वा पट्टं यमेन्द्रोऽसौ महेशानमपूपुजत् ॥२०॥
आकर्ण्य तद्वचो दूतास्तत्पाशदण्डपाणयः। ययुः पाशुपतं क्षेत्रं तमानेतुं रुषा द्रुतम् ॥२१॥

---

ऊ त्यसै दिन त्यो घर छोडेर पशुपतिक्षेत्रमा गयो। अर्काको आशा गरी सेवा गर्दै जीवन बिताउने त्यस सेवकले आफ्नो जीवनलाई धिक्कार्‍यो। हे अगस्त्य मुनि ! रेवती नक्षत्रले युक्त भएको कार्तिकशुक्ल पूर्णिमाका दिन बुधबार मध्यरातमा त्यो मर्‍यो। त्यस दिन त्यसलाई ल्याउनका लागि चित्रगुप्तले आफ्ना दूतहरूलाई पठाए र तिनीहरूलाई भने ॥८-१२॥

चित्रगुप्तले भने – हे यमराज ! हे धर्मराज ! हे मृत्यु ! हे काल ! हे अन्तक ! हे दध्न ! हे उदुम्बर ! हे नील ! हे आर्य ! हे परमेष्ठिन् ! हे वृकोदर ! हे चित्र ! हे भूतघ्न ! हे वत्स ! तपाईं यहाँ हेर्नुहोस्। पट्टमा उल्लेख नभएका तर त्यसले गरेका अनेकौं पापका विचित्र पापहरू छन् ॥१३-१४॥

पापी म्लेच्छका अद्भुत कर्महरू छन्। यसको पापमात्र सञ्चित छ। धर्म अलिकति पनि छैन। यसले पशुहरू र पक्षीहरू गरी चार चार हजार मारेको छ, जलजन्तु एक लाख सिध्याएको छ। क्रूर रिसाहा त्यस म्लेच्छले सबैलाई मारेको छ। उसले जलमा, स्थलमा र आकाशमा आश्रय लिएर बसेका बूढा, बालक आदि अनेक जन्तुलाई पटक्कै दया नराखीकन मारेको छ। आजै त्यस पापीलाई बाटोभरि यातना दिँदै ल्याओ र गाली गर्दै बाँधेर बारम्बार ब्रह्मदण्डले पिट। मारिएका जन्तुहरूको कत्ला, प्वाँखहरू र केशको सङ्ख्या जति छ त्यति नै समयसम्म यसलाई नरकहरूमा पापको फल चखाओ ॥१५-१९॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! यसरी पट्ट देखाएर चित्रगुप्तले आफ्ना दूतहरूलाई पठाए। यमराजले पट्ट बाँध्न लगाएर महेश्वरको पूजा गरे। चित्रगुप्तको भनाइ सुनेर हातमा पासो र लट्ठी लिएका यमराजका दूतहरू रिसाएर त्यसलाई ल्याउन तुरुन्त पाशुपतक्षेत्रमा गए ॥२०-२१॥

---

५. भवद्भिः पश्यतामिह, इति न.सं.पु.पाठः।
६. सहस्राणाञ्चतुर्थानाम्, इति न.सं.पु.पाठः।
७. रुषान्वितेन निर्दयम्, इति न.सं.पु.पाठः।
८. तर्जयन् ब्रह्मदण्डेन प्रबन्ध्या ताडयन्मुहुः, इति न.सं.पु.पाठः।
९. हतानां वत्स तावत्स नरकेषु प्रपच्यताम्, इति न.सं.पु.पाठः।

बध्वा पाशेन तञ्चण्डो दण्डमुष्टितलै रुषा। अध्वनि ताडयन्तस्ते नीत्वा संयमिनीं पुरीम्[१०] ॥२२॥
भर्त्सयन्तः कृतं पापं भुङ्क्ष्वेति तेऽवदन् रुषा[११]। पुरतश्चित्रगुप्तस्य चोपहारः कृतः स तैः ॥२३॥
सोऽपि न बुबुधे मार्गे ताड्यमानो मुहुस्तदा। यातनावाक्प्रहारैश्च पुष्पैर्माल्यैर्यथा द्विपः ॥२४॥
किमेतस्येह कर्त्तव्यं प्रभो तद्दण्डनं पुनः। अस्य प्रक्षेपणं कस्मिन्प्रथमं नरकालये ॥२५॥
श्रुत्वा वचो हि तेषां स समाप्य देवपूजनम्। उद्घाटय पट्टकं यत्तच्चित्रगुप्तो ददर्श वै ॥२६॥
तत्कृतानि च यावन्ति प्रलुप्तानि ददर्श सः। सम्प्रेक्ष्य तानि चित्राणि किमिति किञ्च सम्भ्रमात् ॥२७॥
कस्येदं कर्म चित्रेऽस्मिन्निति चिन्ताकुलोऽभवत्। आहूय किङ्करान् चित्रगुप्तोऽपृच्छत् सुविस्मितः[१२] ॥२८॥

चित्रगुप्त उवाच

वत्साः केनापि पट्टेऽस्मिन्नेतस्य पापिनोऽधुना। यल्लिखितं मया तद्धि लुप्तं कथय निश्चितम् ॥२९॥

यमकिङ्करा ऊचुः

संलिखितं प्रभो यस्य यत्तद्धि भवता खलु। लोपितुं कः समर्थस्तत्[१३] देवोऽपि च न विद्यते ॥३०॥

चित्रगुप्त उवाच

अहोऽद्भुतं महत्कर्म बहुपापात्मनोऽधुना। मल्लिपेर्लोपकः कोऽस्ति विधातारं विनेति च ॥३१॥
अत्र किं कारणं[१४] वत्सा अस्याऽथवा भविष्यति। गत्यपारा तदीशस्य ज्ञापयितुमजं व्रजे ॥३२॥

---

यमराजका दूत चण्डले बाटमा त्यसलाई पासोमा बाँधेर रीसले बारम्बार दण्ड र मुक्का हिर्काउँदै यमराजका पुरीमा ल्याए। यमदूतहरूले त्यसलाई 'हे पापी ! आफूले गरेको फल भोग्' भनी गाली गर्दै चित्रगुप्तको अगाडि उपस्थित गराए। जति हिर्काए पनि, जति गाली गरे पनि उसले बाटमा त्यसको अनुभव गरेन। उसका लागि त्यो प्रहार हात्तीलाई फूल र मालाले हिर्काएजस्तै भयो ॥२२–२४॥

यमदूतहरूले भने – हे प्रभु ! यसलाई कुन यातना दिने ? र पहिले कुन नरकमा लगेर हाल्ने ? चित्रगुप्तले तिनीहरूको वचन सुनेर देवताको पूजा सकिएपछि त्यसको कर्मपट्ट उघारेर हेरे। पट्ट हेर्दा त्यसले गरेका पापहरू सबै मेटिएको देखेर उनी 'यो के भयो ?' भनेर हडबडाउँदै चकित भए। यो कसको विचित्र कर्म होला भनेर आश्चर्य मान्दै यमदूतहरूलाई बोलाएर चित्रगुप्तले सोध्न लागे ॥२५–२८॥

चित्रगुप्तले भने – हे बाबु हो ! यस पापीको कर्मपट्टमा मैले सबै पापको उल्लेख गरेको थिएँ तर त्यो सबै कसरी मेटियो ? साँचो कुरा भन ॥२९॥

यमराजका दूतहरूले भने – हे प्रभु ! हजुरले जसका कर्मका बारेमा जे जे लेख्नुहुन्छ त्यो सबै मेटाउँन को नै समर्थ छ र ? देवताको पनि यसमा सामर्थ्य छैन ॥३०॥

चित्रगुप्तले भने – अत्यन्त पापी यस वितण्डका सम्बन्धमा आश्चर्यजनक घटना हुनगयो। ब्रह्माजीबाहेक मैले लेखेको लिपिलाई मेट्ने अर्को को छ ? यस कुरामा के कारण होला ? भगवान्‌को गति अपरम्पार छ। त्यसैले म अब ब्रह्मालाई निवेदन गर्न जान्छु ॥३१–३२॥

---

१०. ताडयन्पथि चानिन्युः संयमनीं मुहुस्तथा, इति न.सं.पु.पाठः।
११. स्वकृतं पापभुङ्क्ष्वेति वदन्निर्भर्त्सयंश्च ते, इति न.सं.पु.पाठः।
१२. आहूय किङ्करां लुप्तमपृच्छत्तच्छ्तं यमः, इति न.सं.पु.पाठः।
१३. कः समर्थो हि तल्लोप्तुम्, इति न.सं.पु.पाठः।
१४. नो चेत्तद्धेतुकम्, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

प्रययौ चित्रगुप्तोऽसौ ब्रह्मणः सदनं मुने। सार्धमाश्चर्यसम्मोहै[१५] स्त्यक्त्वा तत्रैव पापिनम् ॥३३॥
प्रणिपत्याशु धातारमवोचद्वचनं हि सः। विमुच्य पट्टकं सद्यश्चाऽदर्शयद्विधिञ्च तत् ॥३४॥

चित्रगुप्त उवाच

विभो चित्रप्रवृत्तिञ्च ह्याकर्ण्य तां निवेदये। आजन्म पापिनस्तात धर्मैर्हि वर्जितस्य च ॥३५॥
लिखितं त्वत्प्रसादाद्वै विभो मया हि सर्वशः। असुभृताञ्च कर्माणि किल्विषाणि शुभानि च ॥३६॥
रुक्षनामकिरातस्य चाजन्मपापकर्मणः। लिखितानि च पापानि न मनाग् विद्यते शुभम्[१६] ॥३७॥
यन्मया लिखितं पट्टे तत्कृतं कलुषं विभो। लुप्तं केनापि बोद्धव्यं नारकिणा न विद्महे ॥३८॥

स्कन्द उवाच

आकर्ण्य तद्वचो ब्रह्मा दध्यौ परात्परं मुने। तद्धेतुकाववबोधाय परमेण समाधिना ॥३९॥
ध्वात्वा क्षणं परं ब्रह्म ब्रह्मा लोकदयाकरः। व्याचष्ट वचनं तञ्च म्लेच्छवृत्तप्रकाशकम्[१७] ॥४०॥

ब्रह्मोवाच

शृणुत मद्वचो वेत्ति धर्मराज ऋतं समम्[१८]। रुक्षस्यैव प्रवृत्तिञ्च त्रिकालेषु भविष्यति ॥४१॥
दासोऽसौ हि वितण्डस्य पूर्वदायप्रदस्य च। तस्माद्धि धनिनस्तीव्रं सोऽदानान्निर्द्धनोऽभवत् ॥४२॥
किङ्करस्तस्य दुःखार्त्तो वाक्छरैः पीडितोऽनिशम्। ताडितो लगुडैः क्रोधादेकदा स्वामिना[१९] गृहे ॥४३॥

---

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! चित्रगुप्त आश्चर्यले चकित भए। पापीलाई दूतहरूको जिम्मा लगाएर उनी ब्रह्माजीको लोकमा गए। चित्रगुप्तले ब्रह्माजीलाई अभिवादन गरे र सबै वृत्तान्त बताए। रुक्षको कर्मपट्ट खोलेर ब्रह्माजीलाई देखाए ॥३३–३४॥

चित्रगुप्तले भने – हे प्रभु ! विचित्र वृत्तान्त म हजुरलाई निवेदन गर्दैछु। जन्मदेखि पापैपाप गर्ने धर्मरहित पापी पुरुष र प्राणीहरूका राम्रा – नराम्रा सबै कर्म हजुरको निर्देशनअनुसार मैले लेखेर राखेको थिएँ ॥३५–३६॥

जन्मदेखि नै पापकर्ममा तत्पर रुक्ष नाम गरेको किरातका पापहरू लेखिएका छन्। शुभ भन्ने कर्म अलिकति पनि छैन। जुन मैले पट्टमा लेखेको थिएँ, त्यो सबै हे प्रभु ! पुछिएछ। नरकमा बस्ने कसले त्यसलाई पुछ्यो, हामीले जान्न सकेनौँ ॥३७–३८॥

कार्तिक स्वामीले भन्नुभयो – चित्रगुप्तको कुरा सुनेर एकछिन ब्रह्माजीले त्यसको कारण पत्ता लगाउन समाधि लगाएर परमात्माको ध्यान गर्नुभयो ॥३९॥

सम्पूर्ण प्राणीलाई दया गर्ने ब्रह्माले एकछिन परब्रह्मको ध्यान गर्नुभयो र त्यसो हुनाको कारण चित्रगुप्तलाई बताउनुभयो ॥४०॥

ब्रह्माजीले भन्नुभयो – हे चित्रगुप्त ! तिमी मेरो साँचो कुरा सुन। विद्वान्हरू सत्य जान्दछन्। रुक्षको तीनै कालमा हुने वृत्तान्त सुन। यो दास पूर्वकालमा वितण्डको आसामी थियो। साहुलाई ऋण नतिरेको हुँदा यो अत्यन्त निर्धन भयो। साहुको वाग्बाणले पीडित भएर रुक्ष निरन्तर हिँड्थ्यो। एकपटक रुक्षलाई घरमा मालिकले रिसाएर लट्ठीले पिट्यो ॥४१–४३॥

---

१५. आश्चर्यमोहितैः सार्धम्, इति न.सं.पु.पाठः।
१६. लिखितं पापानि मनाङ् न विद्यते शुभम् इति न.सं.पु.पाठः।
१७. तस्य तस्मै प्रवृत्तिहेतुकम्, इति न.सं.पु.पाठः।
१८. शृणुत मद्वचः सम्यग्धर्मराज ऋतं विदुः, इति न.सं.पु.पाठः।
१९. पतिना, इति न.सं.पु.पाठः।

दुःखार्तः क्रन्दमानोऽसौ हा कष्टेति वदन् पथि । ययौ पाशुपते क्षेत्रे परित्यज्य गृहन्निशि ॥४४॥
एतद्देहान्तरे देहे भविष्यामि नृपो बली । स्वर्णालये सुखं स्थास्ये यदि दास्यति मे शिवः ॥४५॥
आधाय मनसा चेति क्षेत्रे पाशुपते ययौ । निर्धनान् प्राणिनो धिग् धिग् जीवनं परिवर्तनम्[२०] ॥४६॥
सिद्धाटवीमागतवान्स चैकः सम्पूर्णचन्द्रे ह्युडुकृत्तिकाक्ते ।
तत्कार्त्तिकस्यानशनः क्षुधार्त आहारजातं न ददर्श किञ्चित्[२१] ॥४७॥
रुक्षोऽष्टमूर्तेर्मुखसम्भवायां मत्स्यान् ग्रहीतुं जलमाविशद् वै ।
सम्प्रेक्ष्य रक्षो विपिनादटन्तं पीत्वाशु रक्तं त्वहनत्करेण ॥४८॥
तज्जन्तोराममांसाशी भूत्वा स एव राक्षसः । तस्य हन्ताऽद्य वत्साऽसौ वाग्वत्या भूपतीर्थके ॥४९॥
भविष्यति त्वसौ क्रव्यात्किराताधिपतिर्बली । वाग्वतीजलसंस्पर्शात्तद्दिनेऽज्ञानवर्जितः ॥५०॥
करिष्यति ह्यसौ राज्यं तत्रैव प्रवसँश्चिरम् । भविष्यति ततो भूयो नरनारायणात्मकः ॥५१॥
तस्मान्न बुबुधे रुक्षो युष्मत्ताडनजां व्यथाम् । वाग्वतीतोयसंस्पर्शान्निष्पापोऽसौ यतः खलु ॥५२॥
भविष्यति च रुक्षोऽपि मध्यदेशे नृपोत्तमः । अर्कान्वये वरो राज्यं कञ्चित्कालं करिष्यति ॥५३॥
योगीश्वरमुखाच्छ्रुत्वा पशुपतेः प्रशंसनम् । तपोवनं शुभं क्षेत्रं तत्रैव स व्रजिष्यति ॥५४॥
निर्जित्याऽसौ किरातान् वै तत्र राज्यं करिष्यति । विशालनगरीं कृत्वा तपोबलात्सुधार्मिकः ॥५५॥
वैशालाधिपतिस्तस्माद् भविष्यति नृपोत्तमः । दर्शनं पशुपस्यैव तस्य हेतुर्भवेद् ध्रुवम्[२२] ॥५६॥
आराध्य पशुपेशानं निर्जित्य सकलान्सुरान् । पाशुपत्यां ततः पुर्यां सुराज्यं स करिष्यति ॥५७॥

---

दुःखित भएर बाटमा हा कष्ट ! भन्दै रुँदै रातमा घर छोडेर निस्कियो र पाशुपतक्षेत्रमा गयो । यो शरीरपछि अर्को शरीर होला । शिवजीले दिनुभयो भने बलवान् राजा भएर सुनको मन्दिरमा आनन्दसित बसूँला । मनले यस्तो विचार गरेर निर्धन भएर जन्मिएका मानिसको जीवनमा हुने परिवर्तनलाई धिक्कार छ भन्दै त्यो पशुपतिको क्षेत्रमा गयो ॥४४–४६॥

कृत्तिका नक्षत्र र पूर्ण चन्द्रमा उदाएको बेला एक्लै त्यो सिद्धाटवीमा गयो । कार्तिक महिनामा केही खान नपाएको हुँदा भोकले पीडित भएर त्यसले खानेकुरा खोज्यो । महादेवबाट उत्पन्न भएकी वाग्वतीनदीको जलमा उसले माछा समात्न खोज्यो । वनबाट जान लागेको त्यसलाई देखेर राक्षसले तुरुन्त हातले समातेर रगत पियो र माऱ्यो । हे बाबु ! वाग्वतीको तीर्थमा त्यो जन्तुको काँचो मासु खानका लागि त्यसलाई मार्ने त्यही राक्षस बलवान् किरातहरूको राजा हुनेछ । ज्ञानी नै नभईकन त्यसै पनि वाग्वतीको जल स्पर्श गरेको हुँदा त्यो त्यही ठाउँमा धेरै समयसम्म बसेर राज्य गर्नेछ । त्यसपछि त्यसले फेरि नरनारायणको स्वरूप लिनेछ ॥४९–५१॥

वाग्वतीको जलको स्पर्शले पवित्र बनेका कारण तिमीहरूले बेसरी पिट्दा पनि रुक्षलाई दुःखको अनुभव भएन । वाग्वतीको जलको स्पर्शले गर्दा रुक्ष र राक्षस दुवै निष्पाप भएका छन् । पछि यो रुक्ष मध्यदेशको राजा हुनेछ । सूर्यवंशमा सर्वोत्कृष्ट राजा भएर केही समयसम्म राज्य गर्नेछ । योगीश्वरको मुखबाट पशुपतिको माहात्म्य सुनेर त्यस करुणामय तपोवनको क्षेत्रमा यो जानेछ । धर्मात्मा त्यस रुक्षले तपस्याको बलले सम्पूर्ण किरातहरूलाई जितेर विशाल शहर बसाल्नेछ र त्यसै ठाउँमा राज्य गर्नेछ । त्यसपछि पाशुपतीपुरीको दर्शन गरेका कारण त्यो वैशाली नगरीको राजा हुनेछ । पशुपतिलाई आराधना गरेर सम्पूर्ण देवताहरूलाई जिती पशुपतिपुरीमा त्यसले राज्य गर्नेछ ॥५२–५७॥

---

२०. निर्द्धनजन्मिनो धिग्धिग् जीवनपरिवर्त्तनम्, इति न.सं.पु.पाठः । २१. चान्वेषयाहारमदर्शयत्तत्, इति न.सं.पु.पाठः ।
२२. पाशुपतिं पुरीं प्रेक्ष्य तत्र हेतुं करिष्यति, इति न.सं.पु.पाठः ।

चित्रगुप्त उवाच

चित्रं मे जायते स्वान्ते पापात्माऽसौ पितामह। समाप्नोति नृपांशञ्च दानधर्मैर्विवर्जितः[२३] ॥५८॥
आजन्म तस्य तद्धर्मो न विद्यते मनागपि। भविष्यति कथं सो हि निरवद्यतनुः प्रभो[२४] ॥५९॥

ब्रह्मोवाच

एतद् वृत्तान्तमाकर्ण्य कथं प्राकृततां गतः। माहात्म्यं खलु वाग्वत्या धर्मराट् समदर्शकः ॥६०॥
यो वा को वा नरस्तत्र वाग्वत्याः जलसेचनात्[२५]। भविष्यति स चैवार्यो नरनारायणात्मकः ॥६१॥
इति भगवता प्रोक्तं प्राक् शङ्करेण मे सुत। ब्रह्मसरस्वतीं साक्षात्तन्मुखसम्भवां नदीम् ॥६२॥
दृष्ट्वा स्नानाच्च देहान्ते[२६] रक्षोऽपि जायते नृपः। रुक्षोऽसौ जायते भूपः काञ्चीपुर्यां सुताऽधुना ॥६३॥
सत्वरं गच्छ रे चित्र ![२७] चान्येषां शासनं कुरु। स्नातकानाञ्च भक्तानां मा मा त्वं यातनां कुरु ॥६४॥

स्कन्द उवाच

आकर्ण्य तद्वचोऽगस्त्य धर्मराजपुरःसराः। वाग्वतीजलमाहात्म्यं मुमुदिरे भृशं तदा ॥६५॥
प्रणम्य ते हि धातारं संयमनीं ययुर्मुदा। सर्वभूतात्मने तुभ्यं नमस्कृत्येति भक्तितः ॥६६॥
चित्रगुप्तोऽपि तैः सार्द्धमागत्य वाग्वतीजले। संसस्नौ विधिवद् भक्त्या संयमनीं समागमत् ॥६७॥
रुक्षो जातो नृपो भूत्वा काञ्चीपुर्यां महासुखी। स च जातो हि तत्रैव किराताधिपतिः सुखी ॥६८॥
पूर्वोत्तरे महास्थाने पशुपतेर्विदूरतः। स चकार सुखं राज्यं किराताधिपतिश्चिरम् ॥६९॥

---

चित्रगुप्तले भन्नुभयो - हे पितामह ! दान तथा धर्मबाट वर्जित पापी राजा हुनेछ भनेको सुन्दा मेरो चित्तमा आश्चर्य पैदा भएको छ। जन्मदेखि नै त्यसको अलिकति पनि धर्म छैन भने त्यसले प्रशंसनीय शरीर कसरी पाउला र राजा होला ? ॥५८-५९॥

ब्रह्माजीले भन्नुभयो - यो वृत्तान्त सुनेर धर्मराजजस्तो समदर्शी भएर पनि तिमीले किन नबुझेको ? यो वाग्वतीको माहात्म्य हो। जोसुकै मानिस किन नहोस्, वाग्वतीको जलको स्पर्शले गर्दा त्यसको स्वरूप नर र नारायणको हुनेछ। हे पुत्र ! यो कुरा अघि भगवान् शङ्करले मलाई बताउनुभएको थियो। ब्रह्मसरस्वती अर्थात् वाग्वती साक्षात् उहाँको मुखबाट उत्पन्न भएकी नदी हुन्। यिनको दर्शन गरेपछि राक्षस नै भए पनि यो शरीर छोडेपछि त्यो राजा हुन्छ। हे पुत्र ! यो रुक्ष काञ्चीपुरीमा राजा भएर पैदा हुनेछ। हे चित्रगुप्त ! चाँडै जाऊ। बरु अरूमाथि शासन गर तर वाग्वतीमा स्नान गर्ने भक्तहरूलाई कहिल्यै पनि यातना नदिनू ॥६०-६४॥

कार्तिक स्वामीले भन्नुभयो - हे अगस्त्य मुनि ! धर्मराज, चित्रगुप्त आदि देवताहरू वाग्वतीको जलको माहात्म्य सुनेर अत्यन्त प्रसन्न भए। सम्पूर्ण प्राणीका आत्मा भएका हजुरलाई नमस्कार छ भनी सबैले ब्रह्मालाई भक्तिपूर्वक नमस्कार गरे र प्रसन्न हुँदै तिनीहरू संयमनी नाम गरेको शहरतिर फर्किए। चित्रगुप्त पनि तिनीहरूका साथमा आएर भक्तिपूर्वक वाग्वतीनदीमा विधिअनुसार स्नान गरे र संयमनी नाम गरेको शहरमा गए। रुक्ष काञ्ची नाम गरेको शहरमा अत्यन्त सुखी राजा भयो। त्यो राक्षस त्यसै ठाउँमा किरातको मालिक भएर बस्यो। पशुपतिको पूर्वोत्तरमा रहेको ठूलो क्षेत्रमा किरातको स्वामी भएर त्यसले धेरै समयसम्म सुखपूर्वक राज्य गर्‍यो ॥६५-६९॥

---

२३. लभिष्यतस नृपांशौ तौ दानधर्मैः समार्जितौ, इति न.सं.पु.पाठः।
२४. लभिष्यति तौ हि नरवन्द्यस्तनुर्विभो, इति न.सं.पु.पाठः।
२५ जलसंस्पृशात्, इति न.सं.पु.पाठः।
२६. तद्विग्रहं परित्यज्य, इति न.सं.पु.पाठः।
२७. धर्मराज त्वरा गच्छ, इति न.सं.पु.पाठः।

कश्चिच्चकार राज्यं स धर्मदत्ताऽभिधानकः। ततो दशात्मजास्तस्य बभूवुः शृणु तत्कथाम्[२८] ॥७०॥
धर्मकेतुस्तथा सूर्यकेतुर्बलध्वजो मुने। चन्द्रकेतुः पुनर्विश्वकेतुः सत्यध्वजोऽपरः ॥७१॥
युद्धकेतुर्यज्ञकेतू रुक्मकेतुर्मखध्वजौ। बलकेतुरजेयास्ते[२९] सत्यवाचोऽमितौजसः ॥७२॥
एतैः सहात्मजैर्भूपः काञ्चीराज्यं शशास वै। शताब्दं स सुखं भुक्त्वा काशीं समाव्रजत्किल ॥७३॥
ददर्शाऽसौ मुने काशीं काशिराजेन दीपिताम्। त्रिदशानात्मसात्कृत्य शशास तां सुखं नृपः ॥७४॥
स्वर्णमयीं पुरीं काशीं साट्टप्राकारतोरणाम्। धर्मदत्तो हि तां प्रेक्ष्य तद्वदियेष पत्तनम् ॥७५॥
कञ्चिद्योगीश्वरं गत्वा पृच्छति स्म स्पृहां नृपः। तद्वद्राज्यं कथं लभ्यं तुभ्यं नमोऽस्तु मे वद ॥७६॥
निशम्य तद्वचो योगी ध्यानेक्षणः स्मिताननः। व्याजहार शुभं वाक्यं धर्मदत्ताय कुम्भज ॥७७॥

योगीश्वर उवाच

विनोग्रतपसा तात तुङ्गस्थानं न लभ्यते। न किं ददाति भक्तेभ्य आराधने स्पृहाप्रदः ॥७८॥
तादृशीं नगरीं राजन् राज्यं चापि यदीच्छसि। व्रज पाशुपतं क्षेत्रं कुरु शीघ्रं[३०] तपो भृशम् ॥७९॥

स्कन्द उवाच

आकर्ण्य तद्वचोऽगस्त्य हर्षैः प्रपूरितो नृपः। योगिनां तथ्यमेवेति वचः कृत्वा गृहं ययौ ॥८०॥
सम्मन्त्र्य सह भूपोऽसौ बुद्धिक्षेमेण मन्त्रिणा। अभिषेकं ददौ सम्यक् तद्राज्यं बलकेतवे ॥८१॥
पाशुपतं ययौ पुत्रैस्तेनाशु मन्त्रिणा समम्। सन्त्यज्य तृणवद्राज्यं तत्राऽस्थाप्यात्मजं नृपः ॥८२॥

---

धर्मदत्त नामले प्रसिद्ध रुक्षले काञ्चीपुरी राज्यमा राज्य गऱ्यो। त्यसका दशवटा छोरा थिए। तिनीहरूको नाम सुन। धर्मकेतु, सूर्यकेतु, बलकेतु, ध्वजकेतु, चन्द्रकेतु, विश्वकेतु, सत्यकेतु, ध्वजकेतु, युद्धकेतु, रुक्मकेतु, मखध्वज र बलकेतु यिनका नाम हुन्। अत्यन्त तेजिला र सत्यवादी यी दैत्यहरूलाई कसैले पनि जित्न सक्दैनन्, यो साँचो कुरा हो। यिनै आफ्ना छोराहरूलाई साथमा लिएर सय वर्षसम्म आनन्दसित काञ्ची राज्यमा रुक्षले शासन गऱ्यो र पछि ऊ काशी आयो। रुक्षले त्यहाँ काशीराजले विकसित तुल्याएको काशीलाई देख्यो। त्यसपछि देवताहरूलाई आफ्नो अधीन तुल्याएर उसले त्यस क्षेत्रमा पनि सुखपूर्वक राज्य गऱ्यो ॥७०-७४॥

अट्टालिका, पर्खाल, तोरण आदिले युक्त भएको सुवर्णमय काशीलाई देखेर उसले काशीझैं सुन्दर शहरको चाहना गऱ्यो। त्यो राजाले कुनै योगीसँग गएर हे प्रभु ! तपाईंलाई मेरो नमस्कार छ। काशीजस्तो राज्य कसरी पाउन सकिन्छ ? मलाई बताइदिनुहोस् भन्यो। हे अगस्त्य मुनि ! तिनको कुरा सुनेर योगीले ध्यानदृष्टिले सोचेर मुसुक्क हाँसी धर्मदत्तलाई जवाफ दिए ॥७५-७७॥

योगीश्वरले भने - हे बाबु ! कडा तपस्या नगरीकन ठूलो ठाउँमा पुग्न सकिँदैन। आराधना गऱ्यो भने इच्छा पूर्ण गर्ने भगवान्‌ले भक्तलाई के कुरा दिनुहुन्न र ? हे राजन् ! काशीजस्तो राज्यको चाहना छ भने पशुपतिक्षेत्रमा गएर चाँडै ठूलो तपस्या गर ॥७८-७९॥

कार्तिक स्वामीले भन्नुभयो - हे अगस्त्य मुनि ! तिनको कुरा सुनेर राजा हर्षले गद्गद भयो। योगीहरूले बोली सत्य हुन्छ भन्ने ठानेर ऊ आफ्नो दरबारमा आयो। राजा धर्मदत्तले बुद्धिक्षेम नाम भएको मन्त्रीसँग सरसल्लाह गरेर काञ्ची नगरीको राज्यमा बलध्वज नाम गरेको छोरालाई अभिषेक गऱ्यो। त्यसपछि त्यो राजा आफ्नो छोरालाई राज्यमा राखेर झारजस्तै गरी राज्यलाई त्यागी मन्त्री र अन्य पुत्रहरूका साथ तुरुन्त पशुपतिक्षेत्रमा गयो ॥८०-८२॥

---

२८. चाव्ययम्, इति न.सं.पु.पाठः। २९. देवासुरैरजेयास्ते, इति न.सं.पु.पाठः।
३०. तत्र करिष्यति, इति न.सं.पु.पाठः।

विशालनगरीं रम्यां किरातैः पूरितां मुने। धर्मदत्तो ददर्शादौ साट्टप्राकारतोरणाम् ॥८३॥
कथं जेयाः किरातास्ते इति चिन्ताकुलोऽभवत्। अस्मिन् राज्ये कथं स्थास्ये बुद्धिक्षेमाशु मे वद ॥८४॥

बुद्धिक्षेम उवाच

विनोग्रतपसा हृद्यं कामं न लभ्यते प्रभो। तत्काङ्क्षा विद्यते स्वान्ते भवतश्चेत्प्रतप्यताम् ॥८५॥
आधाय चित्तं शिवपादपद्मे[३१] भक्त्याशुतोषं शिववाग्भवायाम्।
स्नात्वा तमेवार्चय तत्तटे वैश्रीमत्स्पृहां प्राप्स्यसि सत्वरं ताम् ॥८६॥

स्कन्द उवाच

संश्रुत्य वचनं भूयो बुद्धिक्षेमस्य कुम्भज। तप्तवान्यत्र सिद्धर्षिर्मणिचूडाचलं ययौ ॥८७॥
योगेश्वरीं प्रणम्यादौ सिद्धर्षिं स च भक्तितः। शुभेऽहनि ऋषेस्तस्मादुपदेशं समाददे ॥८८॥
आप्लाव्य वाग्वतीतोये धर्म्मदत्तो यथाविधि। प्रतेपे सुन्दरीतीर्थे तद्राज्यकाङ्क्षया हृदा ॥८९॥
मार्गकृष्णचतुर्दश्यां लिङ्गं बालुमयं नृपः। सम्पूज्य विधिवत्तेपे मासमेकमभोजनः[३२] ॥९०॥
मासान्ते किल वाग्देवी तत्तीर्थात्सम्भवाहनि। व्याचष्ट वचनं राज्ञे वरदानाय कुम्भज ॥९१॥
शृणु राजन् वरं दास्ये यत्ते मनसि विद्यते। जित्वा किरातराजानं तद्राज्यं लप्स्यसे ध्रुवम् ॥९२॥
इति दत्त्वा वरं देवी तस्मै तद्वाञ्छितं मुने। तिरोदधे हि वाग्वत्यां तुष्टार्चनस्तवैर्भृशम् ॥९३॥
वाग्देव्यै जगतां धात्र्यै वरदायै नमो नमः। एवं स्तुत्या परिक्रम्य हृदि भावं दधे नृपः ॥९४॥

---

हे मुने ! त्यस धर्मदत्तले किरातहरूले भरिएको अग्ला अग्ला तोरणहरूले युक्त भएको सुन्दर विशाल नगर देख्यो। यी किरातहरूलाई कसरी जित्ने भन्ने उसलाई चिन्ता पर्‍यो भन्यो – हे बुद्धिक्षेम ! यस राज्यमा हामी कसरी बस्ने ? मलाई बताऊ ॥८३–८४॥

बुद्धिक्षेमले भन्यो – हे प्रभु ! उग्र तपस्या नगरीकन हृदयले चाहेको कामना प्राप्त हुन सक्दैन। यदि हजुरको हृदयमा त्यस्तो आकाङ्क्षा छ भने तपस्या गर्नुहोस्। चित्तमा मोक्ष प्रदान गर्ने सूर्यजस्ता प्रकाशमान आशुतोष शिवजीलाई धारण गरेर शिवजीको वाणीबाट पैदा भएको नदीमा स्नान गरी तिनकै किनारमा बसेर शिवजीको पूजा गर्नुहोस्। अनि तपाईंको सम्पत्ति पाउने त्यो अभिलाषा तुरुन्त पूर्ण हुनेछ ॥८५–८६॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! राजा धर्मदत्तले बुद्धिक्षेमको वचन सुनेर जहाँ सिद्धर्षिले तपस्या गरेका थिए, त्यसै मणिचूड नाम गरेको पर्वतमा उनी गए र तपस्या गरे। ती राजाले पहिले योगेश्वरी (वज्रयोगिनी) लाई र सिद्धर्षिलाई भक्तिपूर्वक नमस्कार गरे। शुभ समय पारेर उनले ऋषिबाट उपदेश लिए। धर्मदत्तले विधिपूर्वक वाग्वतीको जलमा स्नान गरेर हृदयमा राज्य पाउने इच्छा राखी सुन्दरी तीर्थमा तपस्या गरे। मार्गकृष्ण चतुर्दशीका दिन बालुवाको शिवलिङ्ग बनाएर विधिपूर्वक राजाले एक महिनासम्म केही नखाई तपस्या गरे। हे अगस्त्य मुनि ! एक महिनाको अन्त्यमा त्यस तीर्थबाट पैदा भएर वाग्देवीले वरदान दिनका लागि राजालाई भन्नुभयो ॥८७–९१॥

हे राजन् ! सुन– जे तिम्रो मनमा छ, त्यस्तै वर म दिन्छु। किरात राजालाई जितेर त्यो राज्य अवश्य तिमीले पाउनेछौ। वाग्वतीमा गरेको पूजा र तपस्याले अत्यन्त प्रसन्न भएकी देवी राजालाई इच्छा अनुसारको वर दिएर अन्तर्धान हुनुभयो। संसारकी सृष्टिकर्ता वरदायिनी वाग्देवीलाई बारम्बार नमस्कार छ। यसरी स्तुति गरेर परिक्रमा गर्दै उनी ती देवीप्रति भक्तिभावले ओतप्रोत भए ॥९२–९४॥

---

३१. आधाय चित्तामृतजे शिवार्क, इति न.सं.पु.पाठः।
३२. मासमेकं निराशनः, इति न.सं.पु.पाठः।

सोऽपि भूमिभुजां श्रेष्ठो देव्या लब्धवरस्तदा। ययौ शक्राचलं क्षिप्रं हर्षपूरितमानसः ॥९५॥
तत्रस्थो हि समं लोकैर्दूतमप्रेषयन्नृपः। किरातपतये वक्तुं धर्मशीलं द्विजोत्तमम् ॥९६॥
सोऽप्यागत्य द्रुतं तत्र चावोचद्वचनं मुने। यदुक्तं धर्मदत्तेन संसदि संस्थिते नृपे ॥९७॥

दूत उवाच

शृणु राजन् यदुक्तं ते धर्मदत्तेन भूभुजा। तद्धेतोरागतश्चाऽत्र दूतोऽहं ज्ञायतां द्विजः ॥९८॥
राजशब्दो हि नोऽवश्यं प्रजा रञ्जयतीति वा। शासनैर्भरणैर्द्रव्यैस्तद्धर्मैः पालनान्नृपः ॥९९॥
म्लेच्छानां हि तथाऽन्येषां क्षुद्रशब्दः प्रयुज्यते[३३]। गणनायक इत्याख्यः प्रसिद्ध इति सर्वदा ॥१००॥
त्वं म्लेच्छनायकः शश्वद्वनौकसां गणोत्तमः। प्रसिद्धो वर्त्तमानोऽसि शीलस्वभावजातिभिः ॥१०१॥
वनमेव वरं स्थानं वनौकसां वरं स्मृतम्। क्षत्रियाणां हि तद्राज्यं भद्राय कथितं वरम् ॥१०२॥
अस्मद्योग्यमिदं राज्यं सन्त्यज्य नः पदौ द्रुतम्। प्रणिपत्य वनं गच्छ जीवितुं यदि काङ्क्षसे ॥१०३॥
धूम्रकेतुः समुद्भूतो ह्यद्य तवान्तरायकः। धर्मदत्तो विभुर्नो चेत्पापीयसां सदान्तकृत् ॥१०४॥

स्कन्द उवाच

आकर्ण्य तद्वचोऽगस्त्य म्लेच्छाधिपोऽपि संसदि। कोपञ्चक्रे तदात्यन्तमपि म्लेच्छस्वभावतः ॥१०५॥
निर्भर्त्सयन् द्विजं दूतं खड्गं जग्राह सत्त्वरम्[३४]। खड्गोद्यतकरो भूयो व्याचष्ट वचनं रुषा ॥१०६॥

---

भगवतीबाट तत्काल वर प्राप्त गरेको राजाहरूमा उत्तम राजा धर्मदत्त वरप्राप्तिको खुसियालीले मनलाई भरिभराउ गराई छिटै इन्द्रपर्वततर्फ लागे। तिनले अरू मानिसहरूसँग त्यहाँ बसेर धार्मिक स्वभाव भएका ब्राह्मणलाई सन्देश दिई दूतका रूपमा किरात राजाकहाँ पठाए। त्यसले दूतले पनि गएर सभामा बसेको किरात राजालाई धर्मदत्तको तर्फबाट निम्नलिखित कुराहरू बतायो ॥९५-९७॥

दूतले भन्यो - हे राजन्! धर्मदत्त राजाले जे कुरा भनेका छन्, त्यही कुरा बताउन म आएको छु, म दूत हुँ भन्ने सम्झनुहोस्। हे राजन्! अवश्य नै प्रजारञ्जन गर्ने हुनाले हामीहरूको राजा भन्ने शब्द रहेको छ। त्यस्तै शासनले, पालनपोषणले, द्रव्यले र राजधर्महरूले मानिसहरूलाई पालन गरेको हुँदा नृप भन्ने शब्द रहेको छ। म्लेच्छ र त्यस्तै खालका वनवासी अरू जातिका लागि क्षुद्र शब्दको प्रयोग गरिन्छ। तिमीहरूका नाइकेहरूलाई राजा भनिँदैन, तिनका लागि त गणनायक शब्दको प्रयोग गरिन्छ। तिमी म्लेच्छका नायक हौ, वनवासीका गणहरूमा उत्तम छौ, शीलस्वभाव र जातिले प्रसिद्ध बनेका छौ। त्यसैले गणनायक हौ ॥९८-१०१॥

वनवासीहरूका लागि वन नै उत्तम स्थान हुन्छ। क्षत्रियहरूका लागि राज्य नै कल्याणकारी हुन्छ भनेर भनिएको छ। यो कुरा म तिम्रो कल्याणका लागि भनिरहेको छु। त्यसैले, हे गणनायक! यदि तिमी बाँच्न चाहन्छौ भने हामीले उपभोग गर्नुपर्ने यो राज्य छोडेर हाम्रा चरणमा शरण पर्दै तुरुन्त वनतिर लाग। भनेको मान्दैनौ भने पापीहरूको सधैँ अन्त गर्ने यो राजा धर्मदत्त आज तिम्रो विघ्नस्वरूप धूम्रकेतु भएर पैदा भएको छ ॥१०२-१०४॥

कार्तिक स्वामीले भन्नुभयो - हे अगस्त्य मुनि! सभामा बसेको त्यो किरात राजा त्यो कुरा सुन्नासथ आफ्नो जातीय स्वभाव अनुसार निकै रिसायो। त्यस ब्राह्मण दूतलाई गाली गर्दै तुरुन्त उसले तरवार निकाल्यो। हातले तरवार उज्याएर रिसाउँदै उसले फेरि भन्यो ॥१०५-१०६॥

---

३३. एसोऽपि वै भूभुजाम्, इति न.सं.पु.पाठः।
३३. एतत्छुद्रः प्रचक्ष्यते, इति न.सं.पु.पाठः।
३४. निःसारयद् द्रुतम्, इति न.सं.पु.पाठः।

शङ्कुरुवाच

विना मां भुवि नाऽन्यत्र नृपतिरिति विश्रुतः। कः क्षुद्रोऽत्र समायाति वनौकाः कोऽपि विद्यते ॥१०७॥
अन्विष्यत्यशनं राज्ये चाऽन्नं नास्ति वने किमु। अथवा काङ्क्ष्यते राज्यं क्षुद्रैर्बुभुक्षितैः खलु ॥१०८॥
धिग्धिक् च जीवनं मेऽद्य वनौकोभिर्यतोऽधुना। प्रकाङ्क्ष्यते हि मद्राज्यं जीविते मयि सान्वये ॥१०९॥
हत्वा सैन्यञ्च पापस्य तं हनिष्यामि सान्वयम्। आत्मशक्तिमविज्ञाय वल्गमानञ्च छुद्रकम्[३५] ॥११०॥
निःसारयत्विमं दूतं मदग्रतो धुरन्धर। नो चेद् दूतं ध्रुवं हन्मि चाऽपि चाऽन्यं द्विजं किमु ॥१११॥

स्कन्द उवाच

इत्याकर्ण्य वचो मन्त्री रसिको नाम भूभृतः। न्यसारयत्पुराद्दूतं वाङ्माधुर्येण[३६] सान्त्वयन् ॥११२॥
सोऽपि ययौ त्वरायुक्तो धर्मदत्तो हि यत्र च। राज्ञे न्यवेदयत्सर्वं म्लेच्छाधिपस्य यद्वचः ॥११३॥
आकर्ण्य वचनं भूपो दूतमुखाच्च्युतं तदा। अमर्षैः पूरितः सद्यः सुप्ताहिश्चालनादिव ॥११४॥
व्याचष्टे वचनं राजा सैन्येभ्यो मन्त्रिणे तथा[३७]। आहूय सर्वसैन्यानि स्वात्मजानपि कुम्भज ॥११५॥

धर्मदत्त उवाच

मन्त्रिणो सुत युद्धज्ञा नह्यन्तां कवचैर्द्रुतम्। वाहनानि च रुह्यन्तां नानाशस्त्रोद्यतैर्भृशम् ॥११६॥
अद्यैव निशि तद्राज्यं लुण्ठिष्यामो हि झम्पनैः। म्लेच्छपापं हनिष्यामः पदातीन् योधकान् रणे[३८] ॥११७॥

---

शङ्कुले भन्यो – मबाहेक यस पृथ्वीमा अर्को कुन राजा प्रसिद्ध छ ? कुन छुद्र यहाँ आएको हो ? त्यो कुनै वनवासी हुनुपर्छ। त्यो वनवासीले राज्यमा के खान खोजेको छ ? वनमा केही छैन कि कसो ? अथवा भोका छुद्रहरूले राज्यको इच्छा गर्दैछन् कि क्या हो ? मेरो जीवनलाई धिक्कार छ, किनभने अहिले मेरो वंश र जीवन छँदाछँदै वनवासीहरूद्वारा यस राज्यको आकाङ्क्षा गरिँदैछ। आफ्नो शक्ति नै विचार नगरीकन उफ्रने कुजात त्यस दुष्टका सेनाको हत्या गरी वंशसहित त्यसलाई मार्नेछु। हे धुरन्धर ! यस दूतलाई मेरो सामुन्नेबाट तुरुन्त हट्य। होइन भने ब्राह्मणै भए पनि यस दूतलाई मार्छु ॥१०७–१११॥

कार्तिक स्वामीले भन्नुभयो – राजाको रसिक नाम गरेको मन्त्रीले त्यो कुरा सुनेर मीठो बोलीले फकाउँदै त्यस दूतलाई शहरबाट निकाल्यो। त्यो दूत ब्राह्मण पनि दौडिएर धर्मदत्त भएको ठाउँमा गयो, राजालाई म्लेच्छको स्वामीले भनेका सम्पूर्ण वृत्तान्तहरू निवेदन गऱ्यो। म्लेच्छपतिको सबै कुरा सुनेर राजा पनि सुतेको सर्पलाई चलाउँदा रिसाएझैं क्रुद्ध भए। हे अगस्त्य मुनि ! त्यसपछि हडबडाउँदै राजाले सबै आफ्ना फौज, छोराहरू र मन्त्रीहरूलाई बोलाएर भने ॥११२–११५॥

धर्मदत्तले भने – हे मन्त्री ! हे छोरा हो ! हे युद्धकलामा कुशल सेना हो ! तुरुन्त कवच धारण गर। शस्त्रअस्त्रहरू खूबसित लिएर वाहनमा चढ। आज राति नै झम्टिएर त्यस पापी म्लेच्छको राज्य लुट्नुपर्छ। शहरमा लड्न आउने पैदलसेनालाई मार्नुपर्छ ॥११६–११७॥

---

३५. वाल्गमानमजातिनम्, इति न.सं.पु.पाठः।
३६. वाङ्मधुरश्च, इति न.सं.पु.पाठः।
३७. सैन्येभ्यो मन्त्रिणे पुनः, इति न.सं.पु.पाठः।
३८. युद्धकान् पुरे, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

निशम्य तद्वचः सैन्यं साधुसाध्वित्यभाषत। सन्नह्य कवचैः सद्यो मन्त्री प्रनिःसृतो निशि ॥११८॥
नानावाहनसंरूढं सैन्यं ययौ महोद्भटम्। व्यूहमास्थाय भूपोऽपि प्रययावात्मजैः समम् ॥११९॥
पौषशुक्लद्वितीयायां सैन्यानि नगरं हि तत्। तद्रात्रौ भ्रम्पयामासुरुल्कां प्रज्ज्वाल्य तत्पुरे[३९] ॥१२०॥
दह्यते स्म तदा राष्ट्रमुल्काभिश्च समन्ततः। महान् कोलाहलश्चाभूत्प्राणभृतां भयोदितः ॥१२१॥
नारीणां बालकानाञ्च क्रन्दनमभवत्[४०] भयात्। खरोष्ट्रवाजिनागानां हेषिताज्जनितो रवः[४१] ॥१२२॥
वीराणामभवद्रावो हन्यतां गृह्यतामिति। जघ्नुर्वीरा मिथोऽजस्रं शस्त्रास्त्रैर्दीपिता निशि[४२] ॥१२३॥
तद्राष्टं शुशुभेऽत्यन्तं चाग्निज्वालोत्तमैर्मुने। वलभीदाहशब्दैस्तैर्दावानलैर्यथा जगत्[४३] ॥१२४॥
निशम्य तद्रवं राजा त्वरमाणोत्थितो निशि। ब्रुवन् किमिति धर्मात्मा हर्म्याद्विनिःसृत सुधीः ॥१२५॥
आलोक्य तादृशं राष्ट्रं स्वसैन्यनिधनं निशि। रिपुसैन्यं किरातार्यो भयाद्विनिःसृतः पुरात् ॥१२६॥
एकाकी ह्यवसच्छङ्कुः कञ्चित्कालं वने च तत्। मुक्तः स एव वाग्वत्यां नरो नारायणोऽभवत् ॥१२७॥
सोऽपि जित्वा किरातान् वै कृत्वात्मसाज्जगन्नृपः। अध्यासीन्नगरे नूनं समादायाभिषेचनम् ॥१२८॥

---

कार्तिक स्वामीले भन्नुभयो – त्यसको भनाइ सुनेर सेनाले ठीक हो भने। कवच लगाएर तुरुन्त मन्त्री पनि रातमा नै निस्कियो। अनेक वाहनमा चढेको ठूला लडाकुहरूको फौज लड्नका लागि गयो, राजा पनि व्यूहरचना गरेर छोराहरूका साथमा गए। पौष शुक्ल द्वितीयाको दिन राति उनीहरूले शहरमा आगो लगाए। घर-घरमा आगो सल्काइदिए। त्यसबखत सारा राष्ट्र चारैतिर अग्निको ज्वालाले डढ्न थाल्यो। प्राणीहरू डराए, ठूलो कोलाहल मच्चियो। डरले स्त्रीजाति र बालकहरू रुन कराउन थाले। गधा, ऊँट, घोडा र हात्तीहरूको ठूलो आवाज निस्कियो। वीरहरूका मार, समात जस्ता शब्दहरू निस्कन थाले। रातमा आगो लगाउँदै वीरहरू शस्त्रअस्त्रले परस्परमा मारामार काटकाट गर्न थाले ॥११८-१२३॥

हे अगस्त्य मुनि ! आगाको ज्वालाले त्यो राष्ट्र अत्यन्त डरलाग्दो देखियो। डढेलाको आगाले वनलाई जस्तै घरलाई सखाप तुल्यायो। त्यसबाट ठूलो शब्द उत्पन्न भयो। धर्मात्मा र विद्वान् राजा रातमा त्यस्तो शब्द सुनेर हडबड गर्दै अगाडि आए। के भो ? भन्दै दरबारबाट निस्किए। रातमा त्यस्तो भएको राष्ट्र, आफ्नो सेनाको मृत्यु र शत्रुको फौजलाई देखेर किरातराजा शहरबाट भागे। केही समयसम्म शङ्कु वनमा नै बसे। तिनै वाग्वतीमा मुक्त भएर नरत्व त्याग गरी नारायण भए। ती राजा धर्मदत्तले पनि किरातहरूलाई जितेर राज्यग्रहण गरी अभिषेक लिए अनि शहरमा बसे ॥१२४-१२८॥

---

३९. प्रज्वालन्पुरम्, इति न.सं.पु.पाठः।
४०. क्रन्दमानोद्भवः, इति न.सं.पु.पाठः।
४१. हेषितादभव द्रवः, इति न.सं.पु.पाठः।
४२. शस्त्रास्त्रैर्ज्वालयन्निशि, इति न.सं.पु.पाठः।
४३. वलभीदग्धवच्छब्दैर्दावालनलैर्यथा जगत्, इति न.सं.पु.पाठः।

विशालनगरं कृत्वा चतुर्वर्णैः प्रपूरितम्। धर्मेणापालयद् भूपः प्रजाः संरञ्जयन्मुहुः ॥१२९॥
वैशालाधिपतिस्तस्माच्छ्रेष्ठोऽभूद् भूभुजां मुने। शतवर्षं सुखं राज्यञ्चकार मन्त्रिभिः सुतैः ॥१३०॥

संसेव्याऽसौ स्वयमविरतञ्चण्डिकेशं हि लिङ्गं
गङ्गाम्भोभिर्हरचरणजैः[४४] साज्यपञ्चोपचारैः।
तस्माल्लब्ध्वा प्रवरनृपता[४५] धर्ममंशञ्च कृत्वा
दत्त्वा ताभ्यः खलु वरसुखं चाऽन्वभौक्षीत्[४६] शताब्दम् ॥१३१॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये वाग्वतीमाहात्म्यं नाम चतुःषष्ट्युत्तरशततमोऽध्यायः ॥१६४॥

---

राजा धर्मदत्तले चारै वर्णले युक्त भएको विशाल शहर बनाए र प्रजाहरूलाई खुसी तुल्याउँदै धर्मपूर्वक पालना गरे। हे अगस्त्य मुनि ! उनी विशाल नगरका अधिपति भई उत्तम राजा बने। उनले मन्त्री र छोराहरूलाई साथमा लिएर एकसय वर्षसम्म सुखपूर्वक राज्य गरे ॥१२९-१३०॥

ती राजाले पानी, घ्यू र पाँच किसिमका पूजासामग्रीले चण्डिकेश्वर लिङ्गको बारम्बार पूजा गरे। भगवान् चण्डिकेश्वरबाट वर पाएर प्रजाहरूलाई सुख दिए र सय वर्षसम्म राज्यभोग गरे ॥१३१॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्ड नेपाल माहात्म्यमा वाग्वतीमाहात्म्यनामक
एकसय चौसट्ठिऔं अध्याय पूरा भयो।

---

४४. नीताम्भोभिर्हरचरणजैः, इति न.सं.पु.पाठः।
४५. तस्माल्लब्धप्रवरनृपतिः, इति न.सं.पु.पाठः।
४६. वरसुखञ्चान्वभुङ्क्ते, इति न.सं.पु.पाठः।

# पञ्चषष्ट्युरशततमोऽध्यायः

देवतानां सत्यवती(नेपालिका)पुरीप्रवेशः

स्कन्द उवाच

विशालनगरीराज्यं वैशालाधिपतिश्चिरम्। सुखञ्चकार धर्मात्मा प्रजाः संरञ्जयन् मुने ॥१॥
कार्तिक्यां पूर्णिमायां स ध्वनिं शुश्राव च स्वयम्। नानावाद्योद्भवं गीतं गन्धर्वाणां नृपो निशि ॥२॥
किमिति च ब्रुवन् राजा श्रोतुकामो द्रुतोत्थितः। आरुह्य वलभिकोटिमश्रावीत्तद्वने रवम् ॥३॥
विमानानि समद्राक्षीद् व्योम्नोऽवतरणानि च। प्रदीपयन् प्रदीपैः स नानामण्युद्भवैस्तथा ॥४॥
अवतीर्य स्वयं राजा मन्त्रिणा सह निःसृतः। ययौ वनं हि तद्द्रष्टुं खड्गपाणिर्द्धनुर्द्धरः ॥५॥
ददर्श क्षेत्रपालं स तत्प्रान्ते सम्भवे वने। करालवदनं भीष्मं दंष्ट्रिणमसिहस्तकम् ॥६॥
दुद्रुवतुस्तमालोक्य तावुत्तरदिशि द्रुतम्। सन्त्यज्य कार्मुकं खड्गं कृतान्तमिव दर्शने ॥७॥
धर्मेश्वरं भजन्तं तं[1] मार्कण्डेयं ददृशतुः। तदन्तिकं गतौ भीष्ममनिवेदयतां हि तम् ॥८॥
प्रणिपत्य मुनिं भक्त्या राजा वचनमब्रवीत्। नमस्ते मुनिराजेश सर्वप्राणिदयाकर ॥९॥
भयप्रदो वने नौ हि चोर्ध्वकेशो भयावहः। करालवदनः खड्गी कालानल इवाऽन्तकः ॥१०॥
असिचर्मोद्यतो भीष्मो मुण्डमाली त्रिलोचनः। दृष्टः[2] सर्वज्ञहेतुज्ञ ! कोऽसौ भीष्मो वदस्व मे ॥११॥

---

## अध्याय – १६५

नेपालपुरीमा देवताहरूको प्रवेश

कार्तिक स्वामीले भन्नुभयो- वैशाली नगरीका धर्मात्मा राजाले प्रजालाई खुसी तुल्याउँदै धेरै समयसम्म सुखपूर्वक वैशाली नगरीमा राज्य गरे। राजाले कार्तिक पूर्णिमाको दिन रातमा गन्धर्वहरूले गाएको गीत र विभिन्न किसिमका बाजाहरूको ध्वनि सुने। के हो भन्दै राजाले सुन्न खोजे, हत्तपत्त उठेर दरबारको अटलीको टुप्पामा चढे र वनमा भइरहेको आवाज सुने ॥१–३॥

ती राजाले अनेक मणिका बत्तीहरूको उज्यालो पार्दै आकाशबाट ओर्लिरहेका विमानहरू देखे। राजा दरबारको अटलीबाट ओर्ले र मन्त्रीलाई साथमा लिएर हातमा तरवार र धनुष बोकी वनतिर हेर्न गए। तिनले त्यो वनको एक छेउमा ठूलो दाँत एवं मुख भएका, डरलाग्दा, हातमा तरवार लिएका क्षेत्रपाललाई देखे। यमराजलाई देखेर जन्तुहरू भागेजस्तै गरी तिनलाई देखेर धनुष र तरवार त्यसै ठाउँमा छोडी राजा उत्तर दिशातिर भागे ॥४–७॥

त्यसपछि ती दुई जनाले धर्मेश्वरको उपासना गरिरहेका मार्कण्डेय ऋषिलाई देखे। डराउँदै उनको नजिक गएर सबै वृत्तान्त निवेदन गरे। ऋषिलाई भक्तिपूर्वक ढोगेर राजाले मुनिलाई भने – सम्पूर्ण प्राणीमा दया गर्ने हे मुनिराज ! तपाईंलाई नमस्कार छ ॥९॥ जङ्गलमा हामीले डरलाग्दो ठाडो केश भएको, विकृत मुख भएको, तरवार र ढाल लिएको, मान्छेको टाउकाको माला लगाएको, तीन आँखा भएको भयानक व्यक्ति देख्यौँ, त्यो को हो ? तपाईं सर्वज्ञ एवं कुनै पनि कुराको कारणका ज्ञाता हुनुहुन्छ, हामीलाई बताइदिनुहोस् ॥१०–११॥

---

१. धर्मेश्वरमुपासन्तम्, इति न.सं.पु.पाठः। २. भवान्, इति न.सं.पु.पाठः।

मार्कण्डेय उवाच

शृणु राजन् प्रवक्ष्यामि तद्बीजं हि च सर्वशः। एका मूर्तिरसौ भीष्मश्चाष्टमूर्तेर्हि शूलिनः ॥१२॥
क्षेत्रपालः स विज्ञेयः सर्वक्षेत्रानुशासकः। रक्षकः शूलिनः क्षेत्रे पशुपतेर्न्निरन्तरम् ॥१३॥
वनान्तरे पुरी दिव्या साट्टप्राकारतोरणा। स्वर्णमयी गवाक्षैश्च नानारत्नैः समन्विता ॥१४॥
तन्मध्ये भासतेऽजस्रं लिङ्गं पशुपतीश्वरम्। देवैः प्रसेव्यते नित्यं बहुवाद्यैर्महोत्सवैः ॥१५॥
तिष्ठन्ति रक्षकास्तस्य चत्वारो गोपुरेषु च। नन्दी, भृङ्गी, गणो भीष्मो[३] वासुकिः पञ्चमस्तथा ॥१६॥
तेषामाज्ञाञ्च संलङ्घ्य नैव गन्तुं हि शक्यते[४]। रुद्राल्लब्धवरैर्देवैर्नरैस्तु किमुत पुनः ॥१७॥

वैशालाधिपतिरुवाच

तमीश्वरं महायोगिन् कथं प्रेक्षन्ति सूरयः। सुकृतेन च केनार्य पुरीप्रवेशनं परम् ॥१८॥
कथं नालोकितं लोकैः स्वर्णधाम च शूलिनः। देवैरध्यासितं नित्यं तन्मे सर्वं वद प्रभो ॥१९॥

मार्कण्डेय उवाच

न चर्मचक्षुभिर्मर्त्यैर्द्रष्टव्यं शूलिनः पुरम्। बहुपुण्यकरैर्वत्स निष्पापैर्दृश्यते खलु ॥२०॥
ज्ञानात्मभिस्तपोयुक्तैर्गुह्येश्वर्याः प्रसादतः। पुरीं प्रविश्य राजेन्द्र! दृश्यते पशुपेश्वरः ॥२१॥
दुर्लभं मानुषं देहं लब्ध्वा येन कृतं न हि। दर्शनं पशुपेशस्य स चेह न भवेत्पशुः? ॥२२॥
चतुरशीतिलक्षासु योनिषु गमनं विना[५]। लभेत परमं मोक्षं पशुपतिप्रदर्शकः ॥२३॥
वाञ्छा यदि भवेत् द्रष्टुं[६] पुरीं स्वर्णमयीं पराम्। इमं मन्त्रार्चनैभक्त्या धर्मेश्वरं प्रपूजय[७] ॥२४॥

---

मार्कण्डेयले भन्नुभयो – यो सबै कुराको कारण म बताउँछु, सुन। त्यो भयङ्कर पुरुष अष्टमूर्ति महादेवको एउटा मूर्ति हो। सबै क्षेत्रहरूमा अनुशासन कायम गर्ने र पाशुपतक्षेत्रको सधैँ संरक्षण गर्ने ती क्षेत्रपाल हुन् भन्ने कुरा बुझ। वनको बीचमा एउटा दिव्य सुवर्णमय र रत्नमय शहर छ, त्यसको बाहिर पर्खाल छ, भित्र ढोकाहरू र आँखीझ्यालहरू छन्। त्यसको बीचमा भगवान् पशुपतिको लिङ्ग सधैँ चम्किलो भएर रहेको छ। विभिन्न उत्सवका साथ बाजा बजाएर देवताहरूले सधैँ त्यस लिङ्गको सेवा गर्छन्। त्यसको चारै पुरद्वारमा नन्दी, भृङ्गी, गण, क्षेत्र तथा पाँचौं वासुकि नाग रक्षक भएर रहेका छन्। शिवजीबाट वर प्राप्त गरेका तिनीहरूको आज्ञा नलिईकन देवताहरू पनि त्यहाँ प्रवेश गर्न सक्दैनन्, मानिसको त के कुरा? ॥१२-१७॥

वैशालीनगरीका राजाले भने – हे महायोगी! उसो भए विद्वान्हरू ती ईश्वरको दर्शन कसरी गर्छन् छ? हे आर्य! कुन धर्मले त्यस पुरीमा प्रवेश गर्न सकिन्छ? हे प्रभो! देवताहरूले सधैँ बसोवास गरेको शिवजीको सुवर्णमय त्यस मन्दिरलाई आजसम्म मानिसहरूले किन देखेनन्? मलाई बताउनुहोस् ॥१८-१९॥

मार्कण्डेयले भन्नुभयो – हे बाबु! खाली छालाका आँखा भएका मानिसहरूले भगवान् शङ्करको त्यो शहरलाई देख्न सक्दैनन्। धेरै पुण्य आर्जन गरेका पापमुक्त मानिसले मात्र त्यसलाई देख्छन्। हे राजा! ज्ञानी, तपस्वी व्यक्तिहरूले मात्र भगवती गुह्येश्वरीको अनुकम्पाबाट त्यो शहरभित्र पसेर भगवान् शिवजीको दर्शन गर्न सक्छन्। जसले दुर्लभ मनुष्य चोला पाएर पशुपतिको दर्शन गरेन भने त्यो यस लोकमा के पशु नहोला त? पशुपतिको दर्शन गर्ने मानिसले चौरासी लाख योनिहरूमा जन्म लिनु पर्दैन, उत्तम मोक्ष पाउँछन्। हे राजन्! तिमीलाई भगवान् शङ्करको स्वर्णमय शहर हेर्ने इच्छा छ भने मन्त्र जप र भक्तिपूर्वक पूजा गरेर धर्मेश्वरको सेवा गर ॥२०-२४॥

---

३. गणः, इति न.सं.पु.पाठः।
४. चाकुशला प्रवेशितुम्, इति न.सं.पु.पाठः।
५. लक्षाणाञ्चतुरशीनां योन्युद्भवं विहाय च, इति न.सं.पु.पाठः।
६. वाञ्छा चेद्दर्शितुं राजन्, इति न.सं.पु.पाठः।
७. प्रसेवय, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

निशम्य वचनं तस्य वैशालाधिपतिर्मुनिः। प्रेषयामास राज्ये स्वं मन्त्रिणं शासनोत्सुकम् ॥२५॥
प्रणिपत्य मुनिं भक्त्या धर्मेश्वरं समर्चितुम्। समादाय मनुं तस्मात्कार्तिकीपूर्णिमातिथौ[८] ॥२६॥
पूर्णचन्द्रं समारभ्य कार्तिके हि नृपो मुने। उपासिष्ट शिवं[९] भक्त्या दिव्यैः पञ्चोपचारकैः ॥२७॥
स्तुतिभिर्गीतवाद्यैश्च[१०] निराहारः सुपर्वणि। षण्मासं न गतं यावदुपासने कृते मुने ॥२८॥
धर्मेश्वराय रुद्राय शिवाय शिपिविष्टये। परातीताय देवाय परेशाय नमो नमः ॥२९॥
स्तुतिभक्त्यर्चनैस्तुष्टो लिङ्गादाविरभूत् शिवः। वरदानाय राज्ञे च व्याजहार वचः स्मितैः ॥३०॥

धर्मेश्वर उवाच

प्राप्स्यसे निश्चयं राजन् पुरीं स्वर्णमयीमिमाम्। दास्यसे चेत्[११] प्रजाभ्यस्त्वं धर्मं क्रमाच्चिरार्जितम् ॥३१॥
ताभिः समं सुखं राज्यं स्थानं स्वान्तेप्सितं तव। गुह्येश्वरीं समाराध्य ततः सर्वं हि लप्स्यसे ॥३२॥

स्कन्द उवाच

इत्युक्त्वाऽन्तर्दधे लिङ्गं धर्मेश्वरस्ततो नृपः। लब्धवरो मुदा युक्तो राज्यं प्रत्याययौ स्वकम् ॥३३॥
सर्वाः प्रजाः समाहूय पुत्रामात्यैश्च संसदि[१२]। ताभ्यः स्वकं ददौ धर्मं षडंशं शुभसम्भवम् ॥३४॥
गृहाण वत्स ! धर्मं तं चिरं जीव्याः सुखञ्चर। माऽघेषु व्रज सत्यं वै[१३] धर्मं प्रधारयाऽनिशम् ॥३५॥

---

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! मार्कण्डेय मुनिको त्यो वचन सुनेर वैशालीका राजले शासन गर्न उत्कण्ठित आफ्ना मन्त्रीलाई राज्यमा पठाए। राजाले मुनिलाई भक्तिपूर्वक नमस्कार गरे। धर्मेश्वरको पूजाका लागि कार्तिक पूर्णिमाको दिन मुनिसँग मन्त्र सुने र कार्तिक पूर्णिमादेखि प्रारम्भ गरेर पञ्चोपचार विधिले भक्तिपूर्वक उनले शिवजीको उपासना गरे। हे मुनि ! ती राजाले उत्तम पर्वतहरूमा नखाईकन स्तुति, गान, बजान आदि गर्दै छ महिनासम्म शिवजीको उपासना गरे। धर्मेश्वर, रुद्र, शिव, शिपिविष्ट, परातीत र परेश्वर भगवान् शङ्करदेवलाई बारम्बार नमस्कार छ। स्तुति, भक्ति र पूजाबाट सन्तुष्ट भएका भगवान् शङ्कर राजालाई वर दिनका निमित्त लिङ्गबाट प्रकट हुनुभयो र भन्नुभयो ॥२५-३०॥

धर्मेश्वरले भन्नुभयो – हे राजन् ! तिमीले धेरै समयदेखि कमाएको धर्म यदि प्रजालाई क्रमैले दिन्छौ भने पनि यो सुवर्णमय शहर पाउनेछौ। गुह्येश्वरीको आराधना गरेर प्रजाहरूका साथ सुख, राज्य र आफूले चिताएको ठाउँ तिमीलाई उपलब्ध हुनेछ ॥३१-३२॥

कार्तिक स्वामीले भन्नुभयो – यति भनेर धर्मेश्वर भगवान् त्यसै लिङ्गमा अन्तर्धान हुनुभयो। त्यसपछि वर पाएर प्रसन्न हुँदै उनी आफ्नो राज्यमा फर्किएर आए। ती राजाले सभामा प्रजा, पुत्र र अरु मानिसहरूलाई समेत एकत्रित गरे र आफूले राम्रो कर्म गर्दा उत्पन्न भएको धर्मको छैटौं भाग उनीहरूलाई दिए। हे प्रजागण ! तिमीहरूले त्यो धर्म धारण गर। धेरै कालसम्म बाँच, सुखपूर्वक विहार गर, पापको बाटो नलाग, आर्यधर्मको अनुसरण गर ॥३३-३५॥

---

८. ...पूर्णिमायुते, इति न.सं.पु.पाठः।
९. उपासत शिवम्, इति न.सं.पु.पाठः।
१०. स निराहारः, इति न.सं.पु.पाठः।
११. दास्ये यदि, इति न.सं.पु.पाठः।
१२. प्रजाः सम्भूय राजऽसौ पुत्रामात्यांश्च संसदि, इति न.सं.पु.पाठः।
१३. वत्सार्यम्, इति न.सं.पु.पाठः।

इति दत्त्वा क्रमाद्धर्मं षड्धा विभज्य भूपतिः। धर्मेण पालयामास वैशालाधिपतिस्ततः ॥३६॥
ततो ददर्श खं राजा विमानसङ्कुलं बहु। पुरीं पाशुपतीं दिव्यां सौवर्णी[१४] रुचिभिर्युताम् ॥३७॥
दिव्येक्षणो नृपोऽगस्त्य तपःकर्तुं मनो दधे। सूर्यकेतुं समास्थाप्य राज्ये तस्मायुवाच ह ॥३८॥
पुत्र ! पालय धर्मेण प्रजामात्यान् पुरीमिमाम्। व्रजाम्यहं तपस्तप्तुं गुह्येश्वरीं महेश्वरीम् ॥३९॥
इत्युक्त्वा प्रययौ सद्यो वैशालाधिपतिर्मुदा। लब्धकामो हि तद्राज्यं देवीं प्रणम्य शाङ्करीम् ॥४०॥
गुह्येश्वर्याख्यके तीर्थे स्नात्वा च विधिवन्नृपः। गणेशं क्षेत्रपालं तां द्वास्थां ननाम योगिनीम् ॥४१॥
आदायाज्ञां नृपस्तेषां देव्यालयं विवेश वै। ईषे सितप्रतिपदि प्रणम्य दण्डवन्मुहुः ॥४२॥
आनर्च कालिकां भक्त्या देहहृद्वचनैर्नृप। राज्यकामो मुहुर्नत्वा जपैः स्तवैरहर्निशम् ॥४३॥
नन्दादि च दशम्यन्तमानर्च विधिवत्पराम्। स्वदेहक्षतजैर्देवीं नवम्यां तर्पितां भृशम् ॥४४॥

राजोवाच

कालेश्वर्यै नमो देव्यै भिन्नाञ्जनचयत्विषे। नमस्ते कालिके भद्रे गुह्येश्वर्यै नमो नमः ॥४५॥
दशास्यपद्मसुन्दर्यै भद्रकाल्यै नमो नमः। अष्टोत्तरशताष्टार्धकरायै सततं नमः ॥४६॥
त्रिंशल्लोचनदीप्तास्ये विद्युज्जिह्वे नमोऽस्तु ते। सर्वायुधोज्ज्वले देवि ! मुण्डमालाविभूषिते ॥४७॥
नानाभरणभूषाढ्ये सुकुण्डलोत्तमानने। मुक्तामालोत्तमाङ्गिन्यै[१५] व्याघ्रचर्मोज्ज्वले नमः ॥४८॥

---

हे अगस्त्य मुनि ! यसरी वैशालीका राजाले क्रमैले छ भाग लगाएर धर्मको दान गरे अनि धर्मपूर्वक प्रजाहरूको पालन गरे। त्यसपछि राजाले विमानहरूले व्याप्त भएको आकाश र दिव्य सुवर्णको कान्तिले सम्पन्न पाशुपतीपुरीको दर्शन गरे। दिव्य नेत्र भएका राजाले तपस्या गर्ने विचार गरे। आफ्नो छोरा सूर्यकेतुलाई राज्यमा राखेर उनले भने। हे बाबु ! धर्मपूर्वक प्रजा, मन्त्री र यस नगरीको पालना गर। म तपस्याका लागि महादेवी गुह्येश्वरीको क्षेत्रमा जान्छु। यति भनेर वैशालीका राजा प्रसन्न हुँदै त्यो राज्य प्राप्त गर्ने इच्छाले भगवती गुह्येश्वरीलाई प्रणाम गरेर तपस्या गर्न हिंडे ॥३६–४०॥

गुह्येश्वरी तीर्थमा राजाले विधिपूर्वक स्नान गरेर क्रमैले गणेश, क्षेत्रपाल र द्वारमा रहेका योगिनीलाई प्रणाम गरे। तिनीहरूको आज्ञा अनुसार राजाले देवीको मन्दिरमा आश्विन शुक्ल प्रतिपदाको दिन प्रवेश गरे र बारम्बार दण्डवत् प्रणाम गरे। ती राजाले राज्यको कामनाका साथ रातिदन जप र स्तुति गरेर नमस्कार गर्दै शरीर, हृदय र वचनले भक्तिपूर्वक कालीको आराधना गरे। राजाले प्रतिपदादेखि दशमीसम्म विधिपूर्वक भगवतीको पूजा गरे। उनले आफ्नो शरीरको रगतले नवमीमा भगवतीलाई तर्पण गरे ॥४१–४४॥

राजाले भने – हे कालेश्वरी! गाजलको जस्तो कान्ति भएकी हे देवी ! हजुरलाई नमस्कार छ। हे कालिके ! हे भद्रा ! हे गुह्येश्वरी ! हजुरलाई बारम्बार नमस्कार छ। दशवटा मुखरूप कमलद्वारा अति रमणीय देखिनुहुने भद्रकालीलाई नमस्कार छ। एकसय आठ अथवा चार हातले अलङ्कृत भएकी हे देवी ! हजुरलाई नमस्कार छ। आफ्ना तीन आँखाले मुखलाई उज्यालो पार्ने बिजुलीभैँ चपल जिब्रो भएकी हे देवी ! हजुरलाई नमस्कार छ। सम्पूर्ण आयुधहरूले गर्दा उज्याली बनेकी, मुण्डमाला लगाउने हे देवी ! हजुरलाई नमस्कार छ। नानाथरी अलङ्कार एवं वेशभूषाले सुहाएकी, उत्तम कुण्डल धारण गर्नाले आकर्षक अनुहार भएकी, आफ्नो छातीमा हारको माला लगाएकी, बाघको छाला ओढेकी हे भगवती ! हजुरलाई नमस्कार छ ॥४५–४८॥

---

१४. स्वर्णमयीम्, इति न.सं.पु.पाठः।    १५. हारमालोत्तमाङ्गिन्यै, इति न.सं.पु.पाठः।

नमस्ते भीमदंष्ट्रिन्यै नमोऽसिचर्मधारिणि। श्मशाननिलये मातर्विविधास्यैर्विभूषिते ॥४९॥
क्षतजैरुक्षितास्यायै पीतासृक्क्लिन्नजिह्विके। शवैर्विभूषितायै च शवस्थायै नमो नमः ॥५०॥
ब्रह्मामृतैः परैः पुष्पैर्ब्रह्मादिभिः प्रपूजिते। ब्रह्मानन्दपदं मोक्षं ददत्यै सेविने नमः[१६] ॥५१॥
ब्राह्मी माहेश्वरीन्द्राणी कौमारी वैष्णवी परा। चामुण्डा शिवदूती च वाराह्येताभिराश्रिते ॥५२॥
रुद्रचण्डा प्रचण्डा च चण्डोग्रा चण्डनायिका। चण्डा चण्डवती चण्डी चण्डिका ताभिराश्रिते ॥५३॥
ब्रह्मविष्णुशिवेन्द्राद्यैर्नित्यं प्रसेविते परे। भक्तेप्सितप्रदे देवि गुप्तकालि नमोस्तु ते ॥५४॥

स्कन्द उवाच

इत्याकर्ण्य स्तवं देवी वैशालीशमुखाच्च्युतम्। महानिशि दशम्यां सा साक्षादाविर्बभूव हि ॥५५॥
भक्त्यार्चनैस्तवैस्तस्य प्रसन्नवदना शिवा। व्याचष्ट वचनं राज्ञे वरं दातुं गणैर्वृता ॥५६॥

आर्योवाच

अवश्यं प्राप्स्यसे राजन् पुरीं स्वर्णमयीमिमाम्। यदि प्रधार्यते धर्मः स्वान्तेप्सितञ्च सन्ततम् ॥५७॥
सहस्राब्दं सुखं राज्यं करिष्यसि निरन्तरम्। धर्मं दत्वा प्रजाभ्यस्तल्लप्स्यसे परमं ततः ॥५८॥
गृहाणेममसिं वत्स ! सर्वलोकनिबर्हणम्। असिधारणमालोक्य द्रविष्यन्ति सुरासुराः ॥५९॥

---

डरलाग्दो दाह्रा भएकी, तरवार र ढाल धारण गर्ने, श्मशानमा वास गर्ने हे भगवती ! हजुरलाई नमस्कार छ। रगतले सिञ्चित भएका राता मुखकमल धारण गर्नुहुने, रगत पिउनाले रातो जिब्रो गराएकी, मुर्दाको गहना लगाएकी, शवासनमा विराजमान हुनुभएकी हे देवी ! हजुरलाई नमस्कार छ। ब्रह्मा आदि देवताहरूले उत्तम वेदमन्त्ररूपी अमृत र फूलहरूले पूजा गरिएकी हे देवी ! भक्तलाई ब्रह्मानन्दतुल्य मोक्ष दिने हजुरलाई नमस्कार छ ॥४९-५१॥

ब्राह्मी, माहेश्वरी, इन्द्राणी, कौमारी, वैष्णवी, चामुण्डा, शिवदूती र वाराही नामक मातृहरूलाई अगलबगलमा राखी सुहाएकी हे देवी ! हजुरलाई नमस्कार छ। रुद्रचण्डा, प्रचण्डा, चण्डोग्रा, चण्डनायिका, चण्डा, चण्डवती, चण्डी र चण्डिकाहरूको आश्रय लिएकी हे देवी ! हजुरलाई नमस्कार छ ॥५३॥ ब्रह्मा, विष्णु, शिव र इन्द्र आदि देवताहरूद्वारा सधैं अत्यन्त सेवा गरिएकी, सर्वोत्तम स्वरूप भएकी, भक्ति गर्ने व्यक्तिलाई अभीष्ट दान दिने हे गुप्तकाली ! हजुरलाई नमस्कार छ ॥५२-५४॥

कार्तिक स्वामीले भन्नुभयो - वैशालीका राजाको मुखबाट उच्चारण गरिएको यस्तो स्तोत्र सुनेर दशमीको आधा रातमा भगवती प्रत्यक्ष हुनुभयो। राजाको भक्तिपूर्वक पूजा र स्तोत्रहरूले प्रसन्न भएकी र गणहरूका साथमा विराजमान हुनुभएकी भगवतीले राजालाई वर दिनका लागि भन्नुभयो ॥५५-५६॥

भगवतीले भन्नुभयो - हे राजन् ! यदि तिमीले सधैं धर्मलाई राम्रोसित हृदयमा धारण गर्छौ भने तिमीले चाहेको यो सुवर्णमय नगर अवश्य पाउनेछौ। हजार वर्षसम्म तिमीले निरन्तर यस राज्यमा सुख भोग गर्नेछौ। त्यसपछि आफ्ना धर्म प्रजालाई दिएर तिमी परमपदमा पुग्नेछौ। हे बाबु ! सबैलाई तह लगाउने यो तरवार समात। यसलाई समातेको देखेर देवता र राक्षसहरू सब भाग्नेछन् ॥५७-५९॥

---

१६. भक्तेभ्यो ददते नमः, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

इत्युक्त्वान्तर्दधे देवी भासयन्ती च गह्वरम्[१७]। दर्शयन्ती योगिनीश्च रविरस्ताचलाद् यथा[१८] ॥६०॥
खड्गं समाददे देव्याः प्रणम्य नृपतिर्मुदा। परिक्रमंस्तदा भक्त्या देवीं स्तुवन्मुहुर्मुहुः ॥६१॥
लब्धवरः प्रजानाथो देव्यालयाद्विनिर्ययौ। खड्गपाणिश्च वीरोऽसौ विशालनगरं ययौ ॥६२॥
आहूय सकलान्[१९] लोकान् प्रजामात्यान् स तान्नृपः। सम्मन्त्र्य तैः समं तत्र युद्धाय नह्यतामिति ॥६३॥
विनिर्ययौ पुराद्राजा भटैः सैन्यैः समावृतः। रोधयामास तद् राष्ट्रं समावृत्य चतुर्दिशः ॥६४॥
नादाँञ्चक्रुश्च तत्सेना ढक्कापटहडिण्डिमैः। भेरीगोमुखकाहालैर्जलजैः कांस्यजैस्तथा ॥६५॥
निशम्य तद्रवं भीष्मं दिक्पाला निर्ययुः पुरात्। नानाशस्त्रास्त्रमुद्यम्य स्वस्ववाहनगामिनः ॥६६॥
पुरन्दरो युयोधाशु समं हि यज्ञकेतुना। सन्त्रास्य सकलांल्लोकान् शस्त्रास्त्रक्षेपणैर्मुहुः ॥६७॥
युयोधाशु कृपीटश्च साकं हि चन्द्रकेतुना। त्रासयन्सर्वशो युद्धे चास्त्रशस्त्रप्रहारणैः ॥६८॥
कृतान्तो हि युयोधाशु सार्द्धं हि विश्वकेतुना। प्रहारैश्च मिथः शस्त्रैर्भीषयंस्त्रिदशान् नरान् ॥६९॥
युयोध राक्षसस्तीव्रं समं हि सत्यकेतुना। लोकानां जनयंस्त्रासं शस्त्रास्त्रक्षेपणैर्मिथः ॥७०॥
अपाम्पतिर्युयोधाशु सह वै युद्धकेतुना। अद्भुतक्षेपणैरस्त्रैयोधाँस्तान् हर्षयन् मुहुः[२०] ॥७१॥
प्रभञ्जनो युयोधाशु जगतां केतुना समम्। वेगप्रहारशस्त्रास्त्रैर्योधान्प्रहर्षयन् मुहुः ॥७२॥
धनाध्यक्षो युयोधाशु सह वै रुक्मकेतुना। प्रहरंश्च प्रहारेषु[२१] देवान्मर्त्यान् प्रमोदयन् ॥७३॥
युयोधाशु स ईशानः साकञ्च धर्मकेतुना। ताडयन् क्षेपयन् शस्त्रैः सर्वलोकान् विभीषयन् ॥७४॥

---

कार्तिक स्वामीले भन्नुभयो - यति भनेर भगवतीले योगिनीहरूलाई देखाउँदै अस्ताचलबाट रविले जस्तै गुफालाई उज्यालो तुल्याउँदै त्यसै भित्र अन्तर्धान हुनुभयो। राजाले तरवार समातेर देवीलाई प्रसन्न हुँदै प्रणाम गरे, भक्तिपूर्वक परिक्रमा गरे र बारम्बार स्तुति गरे। वर पाएपछि राजा देवीको मन्दिरबाट निस्किए। हातमा तरवार लिएका वीर राजा विशालनगरमा गए ॥६०-६२॥

ती राजाले सबै प्रजा र मन्त्रीहरूलाई बोलाए, सल्लाह गरे, त्यसपछि युद्धका लागि तयार होऊ भने। योद्धा र सिपाहीलाई साथमा लिएर राजा शहरबाट निस्किए। चारैतिरबाट त्यस राष्ट्रलाई घेरे। तिनका सेनाहरूले ढक्का, नगरा, झ्याली, भेरी, गोमुख, काहल, शङ्ख, कास्य आदि बाजाहरू बजाए। त्यो भयङ्कर शब्द सुनेर दिक्पालहरू अनेकौं शस्त्रअस्त्र लिएर वाहनमा चढी शहरबाहिर निस्किए। इन्द्र बारम्बार शस्त्र र अस्त्रका प्रहारले सबै मानिसहरूलाई तर्साउँदै यज्ञकेतुसँग लड्न थाले। युद्धमा शस्त्र, अस्त्रहरूको प्रहार गरेर त्रास सिर्जना गर्दै अग्नि चन्द्रकेतुसँग लडे। यमराजले शस्त्रहरूको प्रहार गरेर देवता र मानिसहरूलाई डर पैदा गर्दै फूर्तिसँग विश्वकेतुसँग लडे ॥६३-६९॥

परस्परमा अस्त्र-शस्त्रहरूको प्रहार गरेर मानिसहरूलाई डर पैदा गराउँदै नैर्ऋत सत्यकेतुसँग खूबसित लडे। वरुणले अद्भुतसँग प्रहार गर्ने अस्त्र लिएर लड्ने शत्रुहरूको हर्षलाई चिर्दै युद्धकेतुसँग फूर्तिसाथ युद्ध गरे। वायु देवताले वेगले दौडिएर प्रहार गर्ने शस्त्र-अस्त्र लिएर लड्नेहरूलाई बारम्बार प्रसन्न तुल्याउँदै जगत्केतुसँग युद्ध गरे। कुबेर छियेछिये रुक्मकेतुसँग लडे। उनले हतियार चलाएर देवता र मानिसहरूलाई खुसी पार्दै प्रहार गरे। ईशान नाम गरेका रुद्रले विशेष किसिमका शस्त्रहरूले हिर्काएर सबै प्राणीहरूलाई त्रास पैदा गर्दै धर्मकेतुसँग युद्ध गरे ॥७०-७४॥

---

१७. तद्गह्वरं प्रभासयन्, इति न.सं.पु.पाठः।
१८. दर्शयन् योगिनीवृन्दमस्ताचलाद् यथा रविः, इति न.सं.पु.पाठः।
१९. सर्वशः, इति न.सं.पु.पाठः।
२०. योद्धानां हर्षसंजयन्, इति न.सं.पु.पाठः।
२१. प्राहारयत्प्रहारैश्च, इति न.सं.पु.पाठः।

प्रहरन्तश्च तान् शस्त्रैः शुशुभिरे नृपात्मजाः[२२]। सत्यधर्मं पुरस्कृत्य युयुधुश्च भृशं युधि ॥७५॥
एवं ते युयुधुर्देवा नृपात्मजैः समं मुने। परिखाभ्यन्तरेऽतिष्ठन् परिश्रमात् प्रशङ्किताः ॥७६॥
प्रविश्य तद्वनं वीरा युयुधुस्तेऽमरैः समम्। तानभिद्रुत्य तद्वृन्दैर्मृगयूथान् वृका इव ॥७७॥
पलायितान्सुरान्प्रेक्ष्य लम्बोदरो रुषान्वितः। उद्यम्य परशुं सद्यश्चैकाकी निर्ययौ पुरात् ॥७८॥
नृपात्मजानभिद्रुत्य जघान तद्बलं गणः। प्रहरन्तं महासैन्यं[२३] प्रेक्ष्याभिदुद्रुवुर्नृपाः ॥७९॥
तथैव क्षेत्रपालोऽसौ नन्दी भृङ्गी तथापरे। खड्गं त्रिशूलमुद्यम्य रुषा विनिर्ययुः पुरात् ॥८०॥
नृपात्मजांश्च तत्सैन्यमभिद्रुत्य भृशं द्रुतम्। प्रजघ्नुर्मानुषान्देवाः शूलगदासिभिर्मुहुः ॥८१॥
प्रेक्ष्य सैन्यं स्वकं राजा क्षतजोक्षितविग्रहम्। दुःखदग्धो ययौ सद्यो धर्मेश्वरमपूपुजत् ॥८२॥
अभ्यर्च्य विधिवल्लिङ्गं वरं प्रार्थ्य ययौ नृपः। पञ्चोपचारकैर्दिव्यैर्गुह्येश्वरीमपूपुजत् ॥८३॥
सुधामानीय भूपालो गुह्येश्वर्याप्लवोद्भवाम्। सिषेच तत्स्वकं सैन्यमस्पृशज्जलपाणिना ॥८४॥
तैश्च परिवृतो[२४] राजा चाऽसिपाणिर्युयोध च। सुतुमुलं समं देवैः शस्त्रास्त्राणि क्षिपन्मुहुः ॥८५॥
तमभिद्रुत्य नन्दी च शूलमुद्यम्य वेगवान्। जघानोरसि राजानं पाशुपतेन कोपतः ॥८६॥
भृङ्गी तमभिद्रुद्राव खट्वाङ्गेन भृशं रुषा। जघान नृपतिं युद्धे पार्श्वदेशे चखान च ॥८७॥
अमर्षी क्षेत्रपालस्तमभिद्रुत्यासिहस्तकः। असिना तं जघानाशु वामपार्श्वे भृशं रुषा ॥८८॥
लम्बोदरो रुषा युक्तः परशुना जघान तम्। वीरशिरःसमुद्दिश्य चालोकयंश्च सर्वशः ॥८९॥
हाहाकारो ह्यभूच्छाब्दः सर्वसत्त्वमुखाच्च्युतः। अस्त्रवृष्टौ सुराणां खं व्याप्तं भूद्रुशिलादिभिः[२५] ॥९०॥

---

राजकुमारहरूले पनि तिनीहरूसँग शस्त्रअस्त्र प्रहार गर्दै युद्धमा सत्यधर्मको पालना गरेर खूबसित लडे। हे अगस्त्य मुनि ! ती देवताहरू यसरी राजकुमारहरूसँग लडे। तिनीहरू परिश्रमले सशङ्कित भएर खाल्यभित्र लुके। वीरहरूले त्यो वनमा प्रवेश गरेर देवताहरूको सामुन्नेमा ब्वाँसाहरू मृगका बथानहरूको अगाडि लडे झैँ देवताहरूसँग लडे। देवताहरूलाई भागेको देखेर गणेश रिसाउँदै वञ्चरो उठाएर तुरुन्त शहरबाट एक्लै बाहिर निस्किए। राजकुमार हरूको नजिकै गएर गणेशले तिनका सेनालाई मार्न थाले। सेनामाथि प्रहार गरिरहेका गणेशलाई देखेर राजाहरू भागे ॥७५-७९॥

त्यसैगरी क्षेत्रपाल, नन्दी, भृङ्गी र अरुहरू पनि त्रिशूल, खड्ग उठाएर रिसाउँदै शहरबाट निस्किए। देवताहरू, राजकुमारहरू अति छिट्टै उनका सेनाको सम्मुख गएर शूल, गदा र तरवारहरूले बारम्बार मानिसहरूलाई मार्न थाले। राजा आफ्नो सेनालाई रक्ताम्य भएको देखेर दुःखले पीडित हुँदै तुरुन्त निस्किए। त्यसपछि धर्मेश्वरको नजिकमा गएर पूजा गर्न थाले। राजाले विधिपूर्वक लिङ्गको पूजा गरे, वर मागे, नजिकै गएर दिव्य पञ्चोपचार विधिले गुह्येश्वरीको पूजा गरे। राजाले गुह्येश्वरीको स्नानबाट निस्किएको अमृत ल्याएर आफ्ना सेनाहरूलाई सेचन गरे, जलपूर्ण हातले स्पर्श गरे ॥८०-८४॥

राजाले हातमा तरवार लिएर बारम्बार शस्त्र तथा अस्त्रहरूको प्रहार गर्दै देवताहरूसँग सेनाको घेरा हालेर युद्ध गर्न थाले। नन्दीले दौडिएर राजाको सामु गई पशुपतिको शूल उठाएर रीसले उनको छातीमा प्रहार गरे। भृङ्गीले राजाको सामुन्ने गएर रिसाउँदै राजालाई खट्वाङ्ग नाम गरेको अस्त्र प्रहार गरे, उनको कोखामा चिथोरे। रिसाहा क्षेत्रपालले हातमा तरवार लिएर राजाको नजिकै गई उनको कोखमा खूबसित प्रहार गरे। गणेशले रिसाएर सबैतिर हेर्दै वीर राजाको शिर ताकेर वञ्चराले हाने। देवताहरूले एकैपल्ट शस्त्र प्रहार गरेपछि आकाश तथा भूमिमा बस्ने सबै प्राणीहरूको एकैपटक मुखबाट हाहाकार शब्द निस्कियो र पृथ्वीका रुख र ढुङ्गाले आकाश ढाकियो ॥८५-९०॥

---

२२. नृपात्मजाश्च तैः साकमस्त्रशस्त्रैः प्रहारयन्, इति न.सं.पु.पाठः। २३. सैन्यं प्रहारयन्तम्, इति न.सं.पु.पाठः।
२४. तैः परिवारयन्, इति न.सं.पु.पाठः। २५. सुरैः प्रपात्यमाने च खं भूद्रुमगतेक्षिणाम्, इति न.सं.पु.पाठः।

खड्गेनैव स्वमात्मानमरक्षयत्तदा नृपः। देवैश्च प्रहृतञ्चाऽस्त्रं न्यवारयत्सुहेलया ॥९१॥
तादृशं ताड्यमानन्तं व्यर्थयत्नं गतज्वरम्। किञ्चिदपि च निष्कम्पमालोक्याशु चुकोप सः ॥९२॥
शुण्डेनाशु तमादाय चाक्षिपदम्बरे गणः। दशयोजनदूरे खे ह्युत्पपात नृपो मुने ॥९३॥
हाहाकारो ह्यभूद् भूयस्तस्मिन् सैन्यमुखोद्भवः। क्रन्दमानाश्च राजानो बभूवुर्मलिनाननाः[२६] ॥९४॥
विमानगाश्च योगिन्यश्चोत्पतन्तं विहायसा। ध्रुवं प्रेक्ष्य विमाने तं तत्राऽस्थाय समाययुः ॥९५॥
चतस्रस्ता भूपतिं च[२७] साधु साधु तमर्हयन्। व्योम्नो विमानगा ऊचुर्देवेभ्यस्त्वरया रुषा ॥९६॥

योगिन्य ऊचुः

पुत्रा एनं कथं हन्तुमुद्यताथोऽविवेकतः। हन्तुं न शक्यते देव्या भक्तो वत्साः ! कदाचन[२८] ॥९७॥
अस्मै प्रदत्ता ह्यद्यैव देव्या चैषा पुरी मुदा। तया दत्तमसिं दिव्यं सर्वशत्रुनिबर्हणम् ॥९८॥
अस्य करोद्यतं तीक्ष्णं दैत्यान्तकं प्रपश्यथ। एवं धारणमात्रेण तस्य करे जयः स्थिरः ॥९९॥
यन्नाम्नि च क्षिपेत्खड्गं स मरिष्यति तत्क्षणात्। करिष्यति नृपो राज्यमपि दिव्यं समद्यतः ॥१००॥
सहस्राब्दं सुरा यावद्देव्याः प्रसादतः सुताः। तावत्सुखं नृपो ह्यस्यां भोक्ष्यत्यनुपमं मुदा ॥१०१॥
सन्त्यज्य नगरीमेनां यान्तु पुत्रा यथासुखम्। अवमानञ्च नायाति नस्तावद् भजथ ध्रुवम् ॥१०२॥

स्कन्द उवाच

उक्त्वैवं वचनं तेभ्यो योगिन्यस्तं पुरो भुवि। दधुः पुत्र ! पुरीं गच्छ राज्यं यथासुखं कुरु ॥१०३॥
योगिनीनां वचः श्रुत्वा[२९] चत्वारस्त्रिदशास्तदा। सन्त्यज्यायोधनं सद्यश्चागमन्पशुपान्तिकम् ॥१०४॥

---

त्यस समयमा राजाले तरवारले नै आफूलाई बचाए। उनले देवताहरूले प्रहार गरेको शस्त्रलाई सजिलैसित हटाए। त्यसरी पिटाइ खाइरहेका र निरर्थक प्रयत्न गरिरहेका तर कत्ति पनि नहल्लिएका राजालाई देखेर गणेश खूब रिसाए। गणेशले सूँडद्वारा तुरुन्त राजालाई समातेर आकाशमा फ्याँके। हे अगस्त्य मुनि ! राजा आकाशमा चालीस कोशमाथि उछिट्टिए। त्यस समयमा सेनाहरूको मुखबाट ठूलो हाहाकार उत्पन्न भयो। राजाहरू रुदै मलिन मुख लगाउन थाले। विमानमा हिँडिरहेका योगिनीहरूले आकाशमा उछिट्टिन लागेका ती राजालाई देखेर उनलाई विमानमा राखी युद्धक्षेत्रमा ल्याए। विमानमा बसेका ती चार योगिनीहरूले आकाशबाट राजालाई विमानमा ल्याए र हडबड र रीसका साथ देवताहरूलाई भने ॥९१-९६॥

योगिनीहरूले भने – हे पुत्रहरू ! विचारै नगरीकन तिमीहरू राजालाई किन मार्न लागेका छौ ? हे बाबु हो ! देवीको भक्तलाई केही गरे पनि मार्न सकिँदैन। देवीले यिनलाई आज नै यो शहर दिनुभएको छ। सम्पूर्ण शत्रुलाई नाश गर्ने उनले दिएको यो तरवार हेर। यिनले हातमा लिएको तरवार दैत्यहरूको नाश गर्ने अस्त्र हो, हेर। यो तरवार हातमा धारण मात्रै गऱ्यो भने पनि त्यो व्यक्ति विजयी हुन्छ। राजाले जसको नाममा तरवार चलाउलान् त्यो तुरुन्तै मर्नेछ। राजाले आजदेखि दिव्य राज्य गर्छन्। हे देवताहरू ! देवीको अनुग्रहले गर्दा राजाले यस पृथ्वीमा एक हजार वर्षसम्म अतुलनीय सुख भोग्न पाउँछन्। हे छोरा हो ! यो शहर छोडेर अब तिमीहरू सुखसित जाओ। यसबाट हामीहरूको अपमान हुँदैन। तिमीहरू सधैं भगवतीको भजन गर ॥९७-१०२॥

कार्तिक स्वामीले भन्नुभयो – योगिनीहरूले देवतालाई यति कुरा भनेर राजालाई जमिनमा अगाडि राखेर भने – हे पुत्र ! शहरमा जाऊ, सुखपूर्वक राज्य गर। योगिनीको कुरा सुनेर चारवटा देवताहरू युद्ध गर्न छाडी तुरुन्त पशुपतिको नजिकै गए ॥१०३-१०४॥

---

२६. राजानश्चाभूवन्मलिनाननाः, इति न.सं.पु.पाठः।
२७. चत्वारो विद्यमाने ताः, इति न.सं.पु.पाठः।
२८. कदापि च, इति न.सं.पु.पाठः।
२९. वचः श्रुत्वेति योगिन्याः, इति न.सं.पु.पाठः।

सम्भूय त्रिदशास्तस्मै निवेदितुं समुद्यताः । तावत्पुरीं विवेशाशु सैन्यैः सह नृपोऽसिधृक् ॥१०५॥
नृपेशं प्रेक्ष्य दिक्पालाः खड्गपाणिं प्रदुद्रुवुः । अवोचञ्छूलिने सर्वं प्रणम्य दण्डवन्मुहुः ॥१०६॥
रक्ष रक्ष विभो नोऽद्य शत्रुभ्यः सङ्कटागतान् । त्वां विना कञ्च त्रातार[३०] यास्यामस्तव किङ्कराः ॥१०७॥
निशम्य तद्वचो रुद्रः कार्यकारणहेतुकः । व्याजहार वचस्तेभ्य ईशानो गूढविग्रहः ॥१०८॥
अवश्यं प्राप्यते वत्सा ! तपस्विनेप्सितं फलम्[३१] । सहस्राब्दं सुखं यावदत्र राज्यं हि भोक्ष्यते ॥१०९॥
सहस्राब्दं ततो यावन्नागीतं जायते खलु[३२] । तावन्मदाश्रयां काशीं गत्वाशु तिष्ठत ध्रुवम् ॥११०॥
ततो यूयं समत्रैव तस्मात्समागमिष्यथ । मया सह तपस्तप्तुं[३३] काशीराजस्य हेतुतः ॥१११॥

स्कन्द उवाच

तदनुशिष्टमादाय परिक्रम्य सुपूज्य च[३४] । विनिर्ययुःपुरा देवा यानस्थाः परिवारिताः ॥११२॥
व्योम्नः पुरीं समालोक्य स्थगितगतयोऽमराः । अरौत्सुस्ते भृशञ्चेति हा पुरि हा तपोवनि ! ॥११३॥
ययुर्वाराणसीं व्योम्नस्तत्रैवासन् सुखं मुने ! । विश्वेश्वरं पूजयन्तः काश्यां तस्थुः सुराश्च ते[३५] ॥११४॥
वैशालाधिपतिः सम्यक् स्वर्णमयीं गृहोत्तमाम् । ददर्श नगरीं दिव्यां साट्टप्राकारतोरणाम् ॥११५॥
विविधमणिभी रत्नैर्गवाक्षैः खचितोत्तमैः । राजमानानि सद्मानि[३६] ददर्श भूपतिर्मुदा ॥११६॥
चन्द्रशालासुहर्म्याणि प्रासादं धवलाश्रयम् । सोऽपश्यत्स्वर्णसद्मानि[३७] मङ्गलाष्टकतोरणम् ॥११७॥
प्रणालीः स्वच्छधाराश्च वापीः पद्मोत्पलाकुलाः । धातुचित्रप्रतोल्यश्च सोऽपश्यच्चित्रिताङ्गणम् ॥११८॥
उद्यानानि विचित्राण्युपवनानि ददर्श सः । सुगन्धिकुसुमोत्फुल्लैर्बहुरङ्गैर्युतानि च ॥११९॥

---

देवताहरू एकत्रित भएर पशुपतिलाई निवेदन गर्न तयार भए । त्यसैबेला राजा तरवार लिएर सेनाहरूसँगसँगै तुरुन्त शहरमा प्रवेश गरे । दिक्पालहरूले राजालाई हातमा तरवार लिएको देखेर भागे । पशुपतिनाथलाई बारम्बार दण्डवत् प्रणाम गरेर सबै वृत्तान्त बताए । हे विभो ! शत्रुहरूबाट भएको सङ्कटबाट हामीहरूलाई रक्षा गर्नुहोस् । हजुरका अनुचर हामीहरू रक्षक हजुरलाई छाडेर कसका शरणमा जाऔँ ? कार्य र कारणलाई जान्ने गुप्त शरीर भएका ईश्वर पशुपतिले तिनीहरूको यस्तो कुरा सुनेर तिनीहरूलाई भन्नुभयो ।१०५–१०८॥

हे बाबु हो ! तपस्या गर्ने व्यक्तिले गरेको तपस्याको फल अवश्य पाउँछ । यी राजाले यहाँ एक हजार वर्षसम्म राज्यभोग गर्नेछन् । त्यसकारण हजार वर्षसम्म तिमीहरूजस्ताको अपवाद सत्य हुनेछैन । त्यतिखेरसम्म काशीको मेरो आश्रममा गएर तिमीहरू बस । त्यसपछि तिमीहरू काशीराजको निमित्त मसँग तपस्या गर्न काशीबाट यहाँ आउनेछौ ।१०९–१११॥

कार्तिक स्वामीले भन्नुभयो – देवताहरूले भगवान्को आज्ञा लिएर परिक्रमा गरी पूजा गरे । त्यसपछि उनीहरू यानमा चढेर शहरबाट निस्किए । देवताहरूले आकाशबाट त्यस शहरलाई हेरे । तिनीहरूको गति रोयियो । हे पुरी ! हे तपोवन ! भन्दै ती देवताहरू अति नै रोए । हे अगस्त्य मुनि ! देवताहरू आकाशबाट उडेर काशी गए र त्यहाँ आनन्दसित बसे । तिनीहरूले काशीमा रहेर भगवान् विश्वेश्वरको पूजा गरे । वैशालाधिपतिले सुनैसुनले खचित भएको, उत्तम कौशीहरू भएको, बाहिरका ढोकाहरू र तोरणले सजिएको त्यस दिव्यपुरीलाई राम्रोसित हेरे । अनेक मणि र रत्नहरूले खचित भएको, राम्रा राम्रो आँखीझ्यालले गर्दा सुशोभित घरहरूलाई राजाले प्रसन्न भएर हेरे । राजाले कौशी, चुनले पोतेको महल, सुनका घरहरू तथा आठ माङ्गलिक तोरणहरू देखे । राजाले आँगन, स्वच्छ धार भएका पानीका नाला, कमल फुलको तलाउ, धातुका चित्रले सिँगारिएका प्रतोलीहरू, सिङ्गारिएका चउरलाई देखे । उनले अनेक रङ्ग भएका बास्ना आउने फूलहरूले झकिझकाउ भएका विचित्र किसिमका बगैँचा र सानासाना उद्यानहरूलाई देखे ॥११२–११९॥

---

३०. त्रायकं कञ्च, इति न.सं.पु.पाठः ।
३१. तपस्विना फलेप्सितम्, इति न.सं.पु.पाठः ।
३२. यावन्नागीतं याचते खलु, इति न.सं.पु.पाठः ।
३३. मदात्मना समं तप्तुम्, इति न.सं.पु.पाठः ।
३४. तमर्हयन्, इति न.सं.पु.पाठः ।
३५. अवात्सुस्त्रिदशाः काश्यां विश्वेश्वरं समर्हयन्, इति न.सं.पु.पाठः ।
३६. गेहानि, इति न.सं.पु.पाठः ।
३७. सोऽपश्यत्स्वर्णगेहानि, इति न.सं.पु.पाठः ।

नानाद्रुमलताभिश्च सफलाभिर्विराजिताम्[३८]। ददर्श वाटिकां दिव्यां पुष्पैः फलैः समन्ततः[३९] ॥१२०॥
अपश्यत्पारिजातं स तन्मध्ये राजितं सदा। पुन्नागयूथिकाजातिमन्दारकनकोत्तमैः ॥१२१॥
क्रमुकैर्लाङ्गलीतालैर्द्राक्षाखर्जूरजातिजैः। लवङ्गैः पनसैराम्रैर्विल्वजम्वीरजैर्बभौ ॥१२२॥
ताम्बूलैः सततोत्पन्नैर्दाडिमीबीजपूरकैः। रम्भाभिर्नित्यनूत्नाभिरपश्यद्राजिताञ्च ताम्[४०] ॥१२३॥
मयूरकोकिलानाञ्च जीवञ्जीवसुपत्रिणाम्। भृङ्गीणां निनदं तत्र सुश्राव कर्णतर्पणम्।
सम्प्रेक्ष्य नगरीं दिव्यां हर्षपूरितमानसः ॥१२४॥
ददर्श शूलिनो राजा प्रासादं तेजसां निधिम्। दण्डवत्पातयन् देहं भूमौ दूराद्ययौ नृपः ॥१२५॥
प्रणम्य त्रिविधैः रुद्रं भक्त्या स्तुवन् पदे पदे। ॐनमः शिवाय रुद्राय पशूनां पतये नमः ॥१२६॥
पञ्चास्यं शङ्करं देवं भजेऽहं परमेश्वरम्। स्तुत्वेशं भूमिपोऽगस्त्य ! लिङ्गान्तिकं समाव्रजत् ॥१२७॥
अद्राक्षीज्ज्योतिषां लिङ्गं लोमाञ्चवाष्पलोचनः। सोऽनमत्खलु पञ्चास्यं शिखामिव विराजितम् ॥१२८॥
नानाकलशमुद्राभिरञ्चितैरष्टहस्तकम्। आनर्च विधिवल्लिङ्गं भक्त्या नृपः समर्हणैः ॥१२९॥
वाग्वतीजीवनैः पुष्पैः परिक्रमन् ननाम सः[४१]। अलिखच्चित्रगुप्तो वै यावद्रोमाणि भूपतेः ॥१३०॥
रोम्णां कल्पं परं स्थानं दण्डवत्स्तुतिदर्शनात्। पदे पदे फलं यावद्वाजपेयाश्वमेधयोः ॥१३१॥
पशुपतेर्हि नाम्ना वै जापकस्याऽलिखद् यमः[४२]। ददौ सद्मानि[४३] सैन्येभ्यः स्वर्णालयं यथोचितम् ॥१३२॥

---

राजाले फलले सदा सुशोभित भइरहने अनेक रुख, लहराका साथै सबैतर सुन्दर फूल र फलले भरिपूर्ण भएको दिव्य बगैँचा देखे। राजाले त्यसको बीचमा पुन्नाग(चिलाउने), यूथिका(जुही), जाति(जाई), मन्दार, चम्पक (चाँप), क्रमुक (सुपारी) र नरिवलको बीचमा शोभायमान भएर रहेको पारिजातलाई देखे। त्यस्तै ताड, अङ्गुर, खजुर, ल्वाङ्ग, कटहर, आँप, बेल, दाडिम, बीजपुर, सधैँ उत्पन्न भइरहने र केराले सुशोभित त्यस नगरीलाई उनले देखे ॥१२०-१२३॥

मयूर, कोइली, जीवञ्जीव आदि गरिएका राम्रा पँखेटा भएका चराहरू र सुन्दैमा आनन्द दिने भ्रमराहरूको आवाज उनले सुने। सुन्दर खालको दिव्य शहरलाई देखेर उनी हर्षले गद्गद भए। राजाले भगवान् शङ्करको तेजस्वी मन्दिरलाई देखे। टाढैदेखि शरीर झुकाएर उनले दण्डवत् प्रणाम गरे। शरीर, मन र वचनले नमस्कार गरिसकेपछि भक्तिपूर्वक उनले कल्याणदायक भगवान् शङ्करको स्तुति गर्दै भने – पशुका मालिक, रुद्ररूप लिने भगवान् शङ्करलाई नमस्कार छ। पाँचवटा मुख भएका भगवान् शङ्करको म भजन गर्छु। हे अगस्त्य मुनि ! यसरी राजाले शङ्करको स्तुति गरेपछि उनी लिङ्गको नजिकै गए ॥१२४-१२७॥

राजाले ज्योतिर्लिङ्गलाई देखे। हर्षले आँखाभरि आँसु पारेर रोमाञ्चित भए। शिखाजस्तै गरेर विराजमान भएका पाँचमुखे भगवान् शङ्करलाई उनले नमस्कार गरे। विभिन्न किसिमका कलश, मुद्रा आदि धारण गरेका आठ हात भएका पूजनीय भगवान् शङ्करको लिङ्गलाई राजाले विधिपूर्वक सभक्ति पूजा गरे। वाग्वतीको जल र फूल चढाएर प्रणाम गर्दै उनले परिक्रमा गरे। राजाका जति रौँ थिए, त्यति धर्म गरेको कुरा चित्रगुप्तले लेखे। दण्डजस्तै बनेर स्तुति र दर्शन गरेको फल कल्पसङ्ख्या भएको रौँभन्दा पनि बढी हुन्छ। प्रत्येक पाइलामा वाजपेय र अश्वमेध यज्ञ गरेको फल प्राप्त हुन्छ। यस तथ्यलाई पशुपतिको नाम जप गर्ने भक्तका कल्याणका निमित्त धर्मराजले उल्लेख गरेका छन्। राजाले सेनालाई पद अनुसारको सुवर्ण र बसोवासका लागि भवनहरू दिए ॥१२८-१३२॥

---

३८. फलोत्पन्नैर्विराजिताम्, इति न.सं.पु.पाठः।
३९. पुष्पफलोद्भवैः सदा, इति न.सं.पु.पाठः।
४०. कदलीसर्वदोत्पन्नैरपश्यद्राजिताञ्च ताम्, इति न.सं.पु.पाठः।
४१. प्रणम्य च, इति न.सं.पु.पाठः।
४२. नाम्नो वै पाठनायादिशन्नृपः, इति न.सं.पु.पाठः।
४३. गेहानि, इति न.सं.पु.पाठः।

दिक्पतीनाञ्च हर्म्याणि स्वात्मजेभ्यो ददौ नृपः। आदिदेश प्रजाभ्यः स स्वात्मजेभ्यो हि मन्त्रिणे ॥१३३॥
भुङ्क्त ताताः सुखं वत्सा मन्त्रिपुत्राः स्वधर्मतः। देवान् विप्रान् सदा वत्सा गाश्च पूजयतानिशम्[४४] ॥१३४॥
ऋतवाचः सत्यसन्धाः[४५] सत्यस्था भवतोऽनिशम्। दिगीशानां वरस्थानं स्थित्वा राज्यञ्च रक्षत[४६] ॥१३५॥
पुरस्यैतस्य दिक्पाला वत्सा भवत चाद्यतः। रक्षत मन्त्रिणो धर्मात्[४७] प्रजा भरणपोषणैः ॥१३६॥
ज्येष्ठञ्च पितरं मान्यं स्वामिनं सेवतां प्रजाः। रक्षेत् सत्यञ्च धर्मञ्च चतुर्वर्गो भवेद् यतः ॥१३७॥
अधर्माचरणो मर्त्यः स्वल्पायुर्नारकी भवेत्। स्नात्वार्यावाग्वतीतोये पूजयेत् पशुपेश्वरम् ॥१३८॥
त्रिविधैश्च स्तुवन् भक्त्या नाम गृह्णन् परिक्रमन्।

स्कन्द उवाच

इत्यादिश्य नृपस्तेभ्यः सुखं राज्यञ्चकार वै ॥१३९॥
वाग्वतीसलिले स्नात्वा सम्पूज्य[४८] पशुपेश्वरम्। यावन्तस्तत्र मर्त्यास्ते ऋतसत्यसमन्विताः[४९] ॥१४०॥
सत्येन ध्रियते धर्मो[५०] धर्मेणैव स्थिरायुषः। विचिन्त्येति मुदाऽवात्सुर्दिक्पालास्ते तदात्मजाः ॥१४१॥
सत्येन मन्दिराद्राज्यं पालयन्ति स्म ते समे[५१]। तस्मात् सत्यवती ख्याता पुरी निर्वाणदायिनी ॥१४२॥
तेपिरे त्रिदशास्तस्यां तस्मात्तपोवनवती श्रुता। न विद्यते त्रिलोकेषु सत्यवतीसमा पुरी ॥१४३॥
न चर्मचक्षुर्भिर्गम्या स्वर्णमयी सुमुक्तिदा।

---

चारै दिशाका सम्पत्ति र दरबार उनले आफ्ना छोराहरूलाई दिए। त्यही कुरा आफ्ना प्रजाहरू र मन्त्रीहरूलाई उनले बताए। हे बाबु हो ! यहाँ आनन्दसित बस भनेर छोरा, मन्त्री, प्रजा सबैले देवता, ब्राह्मण र गाईको प्रतिदिन पूजा गर्नू भन्ने उनले आज्ञा दिए। साँचो बोल्नु, सोझो हुनु, सत्यको पालना गर्नु, यी दिशा-विदिशाको रक्षा गर्ने दिक्पाल भनेर सबैको रक्षा गर्ने आदेश दिए। हे बाबु हो ! आजदेखि तिमीहरू यस नगरका दिक्पाल बनेर काम गर। हे मन्त्रीहरू हो ! तिमीहरूले धर्मको आश्रय लिएर प्रजाको पालन, पोषण गरी रक्षा गर। सबै जनताले आ-आफ्ना सम्मान्य जेठा बाबु, बाबु, मान्यजन र स्वामीको सेवा गरून्, धर्म र सत्यको रक्ष गरून्। धर्म रसत्यको रक्ष गर्नाले नै धर्म, अर्थ, काम र मोक्ष चारै पुरुषार्थको सिद्धि हुन्छ। अधर्मको आचरण गर्ने मानिस अल्पायु र नरकगामी हुन्छ। तिमीहरूले पार्वतीकै प्रतिमूर्ति वाग्वतीको तटमा स्नान गरेर सधैं भगवान् पशुपतिको पूजा गर्नुपर्दछ। मन, वचन र कर्मले भक्तिपूर्वक भगवान्को स्तुति, नामसङ्कीर्तन एवं परिक्रमा गर्दै पशुपतिको आराधना गर्नुपर्दछ ॥१३३-१३८½॥

कार्तिक स्वामीले भन्नुभयो- हे अगस्त्य मुनि ! यसरी ती राजाले आफ्ना छोरा, मन्त्री र सर्वसाधारण जनतालाई यस्तो उपदेश दिएर प्रतिदिन वाग्वतीको जलमा स्नान गरी भगवान् पशुपतिनाथको पूजा गर्दै राज्यसञ्चालन गरे ती र ाजाको राज्यमा सबै मानिसहरू धर्म र धर्मजन्य उत्तम फलले अनुप्राणित थिए। राजकुमारहरू पनि "सत्यले धर्मलाई धारण गर्दछ, धर्मको पालन गर्नाले जनता पूर्णायु बन्दछन्" भन्ने कुराको चिन्तन गरी राज्यका चारै दिशाको रक्षा गर्दै हर्षपूर्वक शासनमा सहयोगीको भूमिका निर्वाह गरी रहेका थिए ॥१३९-१४१॥

धर्मपूर्वक आफ्नो कर्तव्यलाई उनीहरूले वर्षौंसम्म पालना गरे। त्यसैले सबैलाई मोक्ष दिने यो शहरको नाम सत्यवती रह्यो। देवताहरूले त्यहाँ तपस्या गरे, त्यसैले यसलाई तपोवती भनियो। तीनै लोकमा सत्यवतीजस्तो ठूलो अर्को कुनै शहर छैन। सुवर्णले परिपूर्ण अर्थात् समृद्ध र मुक्ति दिने यस नगरीलाई छालाका आँखाले बुझ्न सकिँदैन ॥१४१-१४३½॥

---

४४. प्रपूजयानिशम्, इति न.सं.पु.पाठः।
४५. सत्यसन्धा ऋतं वाचः, इति न.सं.पु.पाठः।
४६. तिष्ठन् पालयत त्विमम्, इति न.सं.पु.पाठः।
४७. धर्मेण रक्ष मन्त्रीन् ताः, इति न.सं.पु.पाठः।
४८. अभ्यर्च्य, इति न.सं.पु.पाठः।
४९. ऋयावत् सन्ति पुरे मर्त्याः, इति न.सं.पु.पाठः।
५०. सत्यैः प्रधार्यते धर्मम्, इति न.सं.पु.पाठः।
५१. धर्मैश्च मन्दिरादवर्षं पालयन्ति स्म कृत्यताम्, इति न.सं.पु.पाठः।

सत्येन धर्मे प्रचलन्ति मर्त्याः सन्त्यज्य मिथ्या दुरितं क्रमात्ते।
पश्यन्ति लिङ्गं पशुपेश्वरस्य गन्तार एवाशु परं पदं वै ॥१४४॥
शृण्वन्ति येऽध्यायमपारपुण्यं अश्वाध्वरोद्भूतफलं समाप्य।
गच्छन्ति लोकं परमं हि शम्भोर्निर्द्धूतपङ्काः कृतिनो मुदा ते[५२] ॥१४५॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये वैशालाधिपसत्यवतीप्रवेशो नाम पञ्चषट्षष्ट्युरशततमोऽध्यायः ॥१६५॥

---

सत्यमा अडिग रहने मानिसहरूले धर्ममा आश्रित भई जीवनयात्रा चलाउँछन्। तिनीहरूले क्रमशः असत्य र पापलाई छाडिदिन्छन्। सत्य र धर्ममा अटल भएका मानिसहरूले नै भगवान् श्रीपशुपतिनाथको दर्शन गर्ने सौभाग्य पाउँछन् र त्यसैको फलस्वरूप शाश्वत धाममा प्राप्त हुन्छन् ॥१४४॥

यो अध्याय पढ्नाले र सुन्नाले मात्रै पनि अश्वमेध यज्ञ गरेको फल प्राप्त हुन्छ। अन्त्यमा सम्पूर्ण जन्ममा गरेको पापबाट मुक्त भएर ती मानिसहरू शिवजीको परमलोकमा पुग्छन ॥१४५॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्ड नेपाल माहात्म्यमा वैशालाधिपति र सत्यवतीको प्रवेशवर्णन गरिएको
एकसय पैंसट्ठिऔं अध्याय पूरा भयो।

---

५२. निर्द्धूतपङ्का जनुसञ्चिताद्याः, इति न.सं.पु.पाठः।

# षट्षष्ट्युत्तरशततमोऽध्यायः

## नेपालशासकस्य धर्मदत्तस्य शिवलोकयात्रा

### स्कन्द उवाच

राज्ञा सहस्रवर्षान्तं तस्मिन् राज्ये कृते ततः[1]। अभूत्कोलाहलः काश्यां तपःस्थकाशिराजतः ॥१॥
त्यक्त्वा काशीं गिरौ क्वापि सन्तस्थुः पशुपार्पिताः[2]। तप्तुमारब्धवन्तस्ते तत्राययुस्ततोऽमराः ॥२॥
ददृशुर्नगरीं देवाः सिद्धस्थलीं समागताः। आलोक्य तेजसां पुञ्जमेते[3] चिन्ताकुलास्तदा ॥३॥
हा सत्यवति पुर्य्यार्य्ये हा पशुपेश्वर प्रभो। त्वां विना देवशब्दो नो रूढो व्यर्थो भवेदिह ॥४॥
अधिकृत्य विभो स्वर्गं सुराज्यं भवता कृतम्। स्वयं विराजते यस्यां ज्योतीरूपं हि मुक्तिदम् ॥५॥
यदि प्रवेशो नाऽस्माकं[4] जीवनं नहि जीवनम्। अकुशला वयं त्वाञ्वेद् द्रष्टुं कैवल्यनायकम् ॥६॥
सिद्धस्थलीं समास्थाय कर्त्तव्यं ते व्यचिन्तयन्[5]। सम्प्रेक्ष्य नगरीं देवा द्वारि नृपैर्निषेधिताः ॥७॥
रुद्रेण रहिता देवा प्रवेशेऽकुशलास्ततः[6]। महाचिन्ताकुलास्तत्र तेऽभूवन् घटसम्भव ॥८॥
विश्वेश्वरोऽविशद् द्वारं देव्या सममनिर्गलः। पशुपतिं प्रणम्याशु तद्वार्त्ताञ्च न्यवेदयत्[7] ॥९॥
स्वीकारं कृतवान् तं सः[8] पशुपतिः स्वयं तदा। आत्मानमात्मनाऽगस्त्य ! काशीश्वरं सुमानयन्[9] ॥१०॥
आयातु चाऽत्र काशीश ! यथासुखं यदृच्छया। स्वागतं विश्वनाथेश त्वद्बीजं[10] प्रविनश्यति ॥११॥

---

## अध्याय – १६६

### नेपालका शासक धर्मदत्तको शिवलोकयात्रा

कार्तिक स्वामीले भन्नुभयो – हजारौँ वर्षसम्म ती राजा धर्मदत्तले त्यस शहरको राज्य गरे। एक दिन काशी शहरमा तपस्यामा बसेका काशीराजका कारण गोलमाल चलेर भाग्नुपर्दा सबै देवताहरू तपस्या गर्न सत्यवतीमा आए। पशुपतिको भक्ति गर्ने रुद्र आदि देवता काशीशहरलाई छोडेर हिमालय पर्वतमा आई तपस्या गर्न थाले। उनीहरूले सिद्धस्थलीमा आएर त्यहाँको दृश्य हेरे। त्यहाँ ज्वाज्वल्यमान अद्भुत तेज देखेर तिनले मनमनै भने – यो तेजको समूह के हो ? धन्य सत्यवती नगरी, धन्य पशुपति प्रभु ! हे देव ! हजुरविना हामीले आफूलाई देवता भन्नु नै व्यर्थ छ ॥१–४॥

हे प्रभो ! स्वर्गलाई पनि जित्ने सुन्दर शहर बनाएर मुक्तिदायक ज्योतिर्मयस्वरूप लिई आफैँ विराजमान हुनुभएको छ। सिद्धस्थलीमा आएर शहरमा प्रवेश गर्न खोज्दा ढोकामा रोकिएका देवताहरूले चिन्ता गर्दै भने – हे पशुपतिनाथ ! कैवल्यका स्वामी हजुरको दर्शन गर्न हामी असमर्थ भयौँ। यहाँ प्रवेश गर्न नसक्ने हाम्रो जिन्दगी जिन्दगी होइन। सिद्धस्थलीमा आएर प्रवेश गर्न खोज्दा ढोकामा बस्ने राजाहरूले उनीहरूलाई निषेध गरे। त्यस बेला अब के गर्ने भनेर उनीहरूले चिन्ता गरे ॥५–७॥

हे अगस्त्य मुनि ! भगवान् पशुपतिबाट रहित भएका ती देवताहरू हामी कहिल्यै यस नगरमा प्रवेश गर्न लायक हुने भएनौँ भनेर ठूलो चिन्ता गर्न थाले। यसै बखत देवीले सहित भएका काशीका विश्वेश्वर विनारोकटोक पशुपतिको ढोकामा प्रवेश गर्नुभयो र उहाँलाई प्रणम गरी देवताहरूको चिन्ता र चाहनाबारे निवेदन गर्नुभयो ॥८–९॥

हे अगस्त्य मुनि ! त्यतिखेर स्वयं पशुपतिनाथले आत्माले आत्मालाई, ज्योतिले ज्योतिलाई जस्तै गरी आदरका साथ विश्वनाथलाई बोलाउनुभयो – हे विश्वनाथ ! हे काशीश्वर ! आनन्दसित इच्छानुसार आउनुहोस्। तपाईंलाई स्वागत छ। यहाँ प्रवेश गरेपछि तपाईंभित्र रहेको संसारबीज नष्ट हुनेछ ॥१०–११॥

---

१. ततः सहस्रवर्षान्ते तस्मिन् राज्ये कृते नृपे, इति न.सं.पु.पाठः।
२. कश्चिदवसन्नीश्वरोदयः, इति न.सं.पु.पाठः।
३. समूहस्तेजसां पुञ्जादिति, इति न.सं.पु.पाठः।
४. ततः प्रवेशनञ्चात्र, इति न.सं.पु.पाठः।
५. किल चिन्तयन्, इति न.सं.पु.पाठः।
६. चाकुशलाः प्रवेशितुम्, इति न.सं.पु.पाठः।
७. तद्वार्त्तामनिवेदयन्, इति न.सं.पु.पाठः।
८. कृतवान्तस्मै, इति न.सं.पु.पाठः।
९. समाद्रयन्, इति न.सं.पु.पाठः।
१०. तद्बीजम्, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

तल्लिङ्गमपि तत्राऽभूत् स्थापितञ्च समर्चितम्[११] । सोऽविशज्ज्योतिषां लिङ्गे दीपे दीपशिखा यथा ॥१२॥
अवोचद् द्यौपतिस्तत्र ग्रहाँस्तान् सान्त्वयन् मुहुः[१२] । धर्मच्युतौ भवेद्रोगो धर्मच्युतिर्विधीयताम्[१३] ॥१३॥

इन्द्र उवाच

शुभाशुभकरा यूयं पश्यन्तु[१४] नगरीं ग्रहाः । पीडयत यदा लोकं[१५] भौम शने तमो रवे ॥१४॥
धर्मच्युता भविष्यन्ति भवद्भिः पीडिताः प्रजाः । ततः समागमिष्यामः तस्यां युष्मत्कृते खलु ॥१५॥

स्कन्द उवाच

ततो ययुर्ग्रहाः पञ्च पुरस्य गोपुरान्तिके । द्वारस्थेनाशु धर्मेण साक्षात्तदा निवारिताः ॥१६॥

धर्मोवाच

नात्र विशत यूयं भो सत्याढ्ये पत्तने ग्रहाः । षड्वर्गा वृजिनं नाऽत्र नैव सन्ति मनागपि[१६] ॥१७॥
भविष्यत्यत्र वा यत्नो लोकपीडनविग्रहः । यः सत्यवान् दयेशात्मा तं वै रक्षे त्वहर्निशम् ॥१८॥
पुर्यामस्यां सत्यवत्यां[१७] प्रवेशनञ्च वो नहि । दुःखादिवर्जितायां वै यथागताः प्रगच्छत ॥१९॥
अङ्गीकृत्य[१८] ग्रहास्तत्र धर्मस्य वचनं तदा । प्रत्याययुः पुरद्वाराद्यत्र दिक्पतयो वृषा ॥२०॥
ऊचुः ग्रहाश्च शक्राय तद्वृत्तान्तञ्च संसदि । धर्मस्य चरितं सर्वं तत्प्रजापीडनाऽक्षमाः ॥२१॥
अकुशला वयं शक्र भवामो हि प्रवेशने[१९] । अपि द्वारे कुतः पुर्य्यां धर्मो यत्र प्ररक्षकः ॥२२॥
सर्वे पुरौकसः शक्र धर्मनिष्ठा ऋतान्विताः[२०] । यज्ञशीला नृपा नित्यं दानशीलाः शिवार्चकाः ॥२३॥

---

कार्तिक स्वामीले भन्नुभयो – त्यसपछि विश्वनाथको पनि लिङ्ग स्थापना गरियो र यथायोग्य पूजा चल्न थाल्यो । बत्तीमा बत्तीको शिखा मिलेजस्तै गरी विश्वनाथ पशुपतिज्योतिर्लिङ्गमा प्रवेश गर्नुभयो । त्यसबेला इन्द्र महाराजले ग्रहहरूलाई सान्त्वना दिँदै धर्मच्युति भएमा रोग उत्पन्न हुने हुनाले पाशुपतीपुरीमा धर्मच्युति गराउन अनुरोध गरे। पाशुपती पुरीमा प्रवेश गरी नरनारीहरूलाई धर्मच्युत बनाउन र धर्मत्याग गरेका नरनारीलाई रोगी तुल्याउन आदेश दिए – हे मङ्गल ! हे शनि ! हे राहु ! हे सूर्य ! तिमीहरू शुभ तथा अशुभ दाता हौ। तिमीहरू पशुपतिको नगरीमा प्रवेश गर तिमीहरूले पाशुपती पुरीभित्र प्रवेश गरेर त्यहाँका नरनारीहरूलाई पीडा प्रदान गर। हे ग्रहहरू ! तिमीहरूद्वारा पीडित नरनारी स्वधर्मबाट च्युत हुनेछन्। त्यसबेला तिमीहरूलाई सघाउन हामी आउनेछौँ ॥१२–१५॥

स्कन्द भन्नुहुन्छ – इन्द्रको आज्ञा पाएर सूर्य, शनि, मङ्गल, राहु र केतु, यी पाँच ग्रह नगरको गोपुरसम्म गए। गोपुरका द्वारपाल साक्षात् धर्मले तिनीहरूलाई भित्र प्रवेश गर्न दिएनन् ॥१६॥

धर्मले भन्नुभयो – हे ग्रह हो ! सत्यले युक्त भएको यस शहरमा तिमीहरू प्रवेश नगर किनभने यहाँ काम, क्रोध, लोभ, मोह, मद, मात्सर्य र पाप छैनन्। यहाँका शहरमा बस्ने मानिसहरूमा जो विघ्नबाधा आउँछ त्यसलाई हटाई अहोरात्र म यिनीहरूको रक्षा गर्छु। दुःख आदिले वर्जित भएको, सत्यले वास गरेको यस शहरमा तिमीहरू जान सक्दैनौ यसैले जताबाट आयौ, त्यतै जाओ ॥१७–१९॥

त्यसबखत ग्रहहरू धर्मको वचन पत्यार गरेर त्यस शहरको ढोकाबाट फर्केर इन्द्र भएको ठाउँमा पुगे। प्रजाको पालनमा कटिबद्ध भएका राजा धर्मदत्तको सबै चरित्रका विषयमा र तिनका प्रजालाई पीडा प्रदान गर्न असमर्थ भएको विषयमा ती ग्रहहरूले सभाको बीचमा इन्द्रलाई बताए। हे इन्द्र ! हामीहरू धमदत्तले रक्षा गरेको त्यस शहरको भित्र त के शहरमा पस्ने ढोकासम्म पनि पुग्न सकेनौँ किनकि त्यहाँ स्वयं धर्मराज त्यस पुरको संरक्षक भएर बसेका छन्। हे इन्द्र ! सबै त्यस शहरमा बस्ने प्रजा धर्मात्मा, सत्याचारले सम्पन्न रहेछन् भने राजाहरू यज्ञपरायण र दानी तथा शिवपूजक रहेछन् ॥२०–२३॥

---

११. स्वीकारं कृत्य लिङ्गं स संस्थाप्यार्च्य यथाविधि, इति न.सं.पु.पाठः ।
१२. ग्रहेभ्यः शान्त्वयन्मुहुः, इति न.सं.पु.पाठः ।
१३. तेषां धर्मच्युतायाशु रुगार्त्ततयक्तधर्मतः, इति न.सं.पु.पाठः ।
१४. विपश्य, इति न.सं.पु.पाठः ।
१५. पीडयध्वञ्च तत्रस्थान्, इति न.सं.पु.पाठः ।
१६. षड्गर्गा वृजिनञ्चात्र मनागपि न विद्यते, इति न.सं.पु.पाठः ।
१७. सत्यवत्यां समेतस्याम्, इति न.सं.पु.पाठः ।
१८. कृत्वाऽतिथ्यम्, इति न.सं.पु.पाठः ।
१९. प्रवेशितुम्, इति न.सं.पु.पाठः ।
२०. ऋतंवचः, इति न.सं.पु.पाठः ।

इत्याकर्ण्य वचो वज्री ग्रहाणां घटसम्भव। कुपित उक्तवान् तेभ्य धिग्युष्मान् सालसान् ग्रहान्[२१] ॥२४॥
विप्ररूपं समास्थाय विवेश द्वारतः पुरम्। अबाधगतयो विप्राः पुरुहूतो मधुस्रवा ॥२५॥
प्रणम्य दण्डवद्देवं कृत्वा लिङ्गं हि कैतवात्। आशिषं प्रददौ राज्ञे तस्मै यत्र गतः पुरे ॥२६॥
अतथ्यमभवन्नैव यन्मे दत्ताऽपि कैतवात्। यदाशीः पुरुहूतेन ह्यमोघा चाभवन्मुने ॥२७॥
रत्नमालाः समादाय भ्रमति स्म गृहं प्रति। दर्शयन्नबला हारं लोभयन् च स्त्रियो मुहुः ॥२८॥
प्रिये सुवदने देवि हारं गृहाण मौक्तिकम्। रत्नमयञ्च ते योग्यं विद्धि मां वणिजं वधो ॥२९॥
एतन्मौल्यं रतिं कान्ते देहि मे सुरतार्थिने। गृहान्तराद् वचः श्रुत्वा ससर्पुः पतिदेवताः ॥३०॥
निःसारय सखे त्वस्माद्वणिजं छन्नरूपिणम्[२२]। अस्याननं नैव प्रेक्ष्यं दुर्वाक्यस्य कुलस्त्रीषु[२३] ॥३१॥
एवं छन्दयितुं रामाः शक्रोऽभ्रमद्गृहं प्रति। कया नालोकितं वक्त्रमपि तस्य कुलस्त्रिया ॥३२॥
कुलस्त्रीधर्मभङ्गोद्यमाशक्त आस्यधूसरः[२४]। शक्रः प्रत्याययौ तस्मात्तत्र भग्नमनोरथः ॥३३॥
दिक्पालैः सह सम्मन्त्र्य चोवाच भृङ्गिणं वृषा। प्रणम्य शिरसा भक्त्या करपुटं विधाय च ॥३४॥

हे अगस्त्य मुनि ! ग्रहहरूको यस्तो कुरा सुनेर इन्द्र तिनीहरूदेखि रिसाए र उनले भने - हे अल्छी हो ! तिमीहरूलाई धिक्कार छ। त्यसपछि ब्राह्मणको रूप लिएर इन्द्र शहरमा पसे। ब्राह्मणहरू जहाँ पनि जान सक्ने भएकाले ब्राह्मणको रूप लिएका इन्द्रलाई शहरमा प्रवेश गर्न कसैले पनि रोकेनन्। फेरि स्वयं देवराज इन्द्र पनि त आफैँमा सञ्जीवनीबुटी समान भएकाले कसैले विघ्नबाधा गर्न सकेनन्। त्यस धर्मदत्तको नगरमा पुगेपछि इन्द्रले धर्मराजलाई दण्डवत् प्रणाम, आलिङ्गन आदि गरे। त्यसपछि इन्द्रले पनि राजालाई आशीर्वाद दिए। ॥२४-२६॥

हे अगस्त्य मुनि ! छलपूर्वक दिएको आशीर्वाद पनि असत्य हुँदैन। इन्द्रले जुन आशीर्वाद दिए, त्यो निष्फल हुन सकेन। इन्द्र रत्नमाला लिएर घरघरमा घुम्दथे। उनी नगरका स्त्रीहरूलाई हार देखाएर लुब्ध तुल्याउँदै बारम्बार मोहित बनाइरहेका थिए ॥२७-२८॥

उनी भन्दै थिए - हे प्रिये ! हे सुवदने ! हे देवी ! तिम्रा लागि उपयुक्त भएको रत्नमय मोतीको माला लेऊ। हे वधू ! म व्यापारी हुँ भन्ने बुझ। हे प्रिये ! मलाई सुरत(मैथुन) को अभिलाषा छ। यस हारको मूल्य रतिक्रीडा हो, त्यो मलाई देऊ। अर्को घरबाट यस्तो आवाज आएको सुनेर ती सुन्दरीहरूका पतिहरू इन्द्रले लीला गरेका ठाउँमा आएर हे मित्र ! यस व्यापारी गुण्डालाई यहाँबाट निकाल किनकि कुलस्त्रीहरूमाथि दुर्वचन बोल्ने यसको मुख हेर्नुहुँदैन ॥२९-३१॥

यसरी सुन्दरीहरूलाई मोहित तुल्याउँन इन्द्र घर-घरमा डुलिरहेका थिए। त्यस अवसरमा उनी सुन्दरीहरूलाई रत्नका हार देखाउँदै सम्मोहित पार्न खोजिरहेका थिए। कुनै पनि कुलीननारीले उनको मुख हेरेनन्। कुलस्त्रीहरूको धर्मलाई नाश गर्न सदाँ उद्यत रहने ती इन्द्र आफ्नो कार्यमा असफल भएर हास्यास्पद बन्दै अँध्यारो मुख लगाएर स्वर्गमा फर्किए। त्यहाँ पुगेपछि दिक्पालहरूसँग सल्लाह लिएर इन्द्र भृङ्गीऋषिका नजिकै गए, नमस्कार गरे र हात जोडेर भक्तिपूर्वक बिन्ती गर्न लागे ॥३२-३४॥

२१. चुकोप सहसा तेभ्य आलसिनो यतो हि धिक्, इति न.सं.पु.पाठः। २२. खिन्नरूपिणम्, इति न.सं.पु.पाठः।
२३. कुलस्त्री दुर्वचो यतः, इति न.सं.पु.पाठः। २४. ह्यास्यधूसरः, इति न.सं.पु.पाठः।

इन्द्र उवाच

नमस्ते भृङ्गिणे तुभ्यमष्टमूर्त्यैकमूर्तये । गणाय क्षेत्रपालाय नन्दिने च नमो नमः ॥३५॥
यूयं नः कुरुत कार्यं प्रविश्य नगरीं ध्रुवम् । तान् विध्वस्यासुरस्थाने स्थापयध्वं सुरा यथा ॥३६॥
भवन्तः सततं शक्ता इत्यवोचत् पुरन्दरः । भृङ्गी गच्छति ते प्रोचुः स्वकं रूपं विधाय च ॥३७॥
ततो भृङ्गी प्रतिश्रुत्य समास्थाय स्वविग्रहम् । परिभ्रम्य पुरीं दिव्यामविशन्निनदन् मुहुः ॥३८॥
विलोक्य नगरीं शैवीं वृत्तान्तं तादृशं मुने । परिभ्रम्य च तां भृङ्गी प्रत्यागत्याब्रवीत्तदा ॥३९॥

भृङ्ग्युवाच

सत्यवत्या नगर्याश्च वृत्तान्तं शृणुताऽद्भुतम् । नन्दिलम्बोदरक्षेत्रपालशक्रदिगीश्वराः ॥४०॥
पुरी धर्ममयी देव यावत्यस्तत्र वै प्रजाः । सत्यवाच आतिथेयाः[२५] धर्मशीलाः शिवार्पिताः ॥४१॥
राजासौ पालकोऽजस्रं प्रजाः सुधर्मनीतिभिः । विभुं पशुपतिं भक्त्या चोपचारैः समर्हति ॥४२॥
यज्ञशीला द्विजाः सौम्या वेदाध्ययनतत्पराः । सर्वशास्त्रविदोऽजस्रमस्यां सन्ति सुरोत्तमाः ॥४३॥
सम्पश्य नगरीं सर्वामितस्ततः परिभ्रमन् । गतोऽहं नृपतेर्द्वारं साष्टमङ्गलशोभनम् ॥४४॥
भ्रमन्तं द्वारदेशे वै निनदन्तं[२६] मुहुर्मुहुः । अदर्शत्तत्र मां राजा हर्षपूरितमानसः ॥४५॥
धर्मशीलः सभास्थो हि चामात्येभ्य उवाच ह । शीघ्रगं मां द्रुतं द्रष्टुं[२७] भ्रमन्तं भ्रमरं मुहुः ॥४६॥
सुरवं सुन्दरं द्वारि चातिश्यामलविग्रहम् । क्षुधानलकृशाङ्गोऽसौ मद्द्वारि चागतोऽथवा ॥४७॥

---

इन्द्रले भने – तपाईं अष्टमूर्तिमध्ये एक मूर्ति हुनुहुन्छ, गणस्वरूप भएर क्षेत्रको पालना गर्नुहुन्छ। नन्दीको रूप लिने हजुरलाई बारम्बार नमस्कार छ। हे ऋषि ! तपाईं यो कुरा निश्चय गरेर त्यस शहरमा पस्नुहोस् र हामी देवताहरूको काम सम्पन्न गरिदिनुहोस्। तिनीहरूलाई नाश गरेर असुरहरू बसेको ठाउँमा देवताहरूलाई नै राखिदिनुहोस् ।यो काम गर्न हजुर समर्थ हुनुहुन्छ। आफ्नो रूप बनाएर भृङ्गी जानुहुन्छ भनेर देवताहरूले भने। त्यसपछि भृङ्गीले पनि हुन्छ भनेर भमराको रूप धारण गरे। सुन्दर शहरलाई परिक्रमा गरे, अनि शब्द गर्दै शिवपुरीमा प्रवेश गरे। हे अगस्त्य मुनि ! भृङ्गीले शिवजीको शहरलाई देखेर फेरि परिक्रमा गरे अनि फर्केर आएर त्यस पुरीको वृत्तान्त बताउन लागे ॥३५–३९॥

भृङ्गीले भने – हे लम्बोदर ! हे नन्दी ! हे क्षेत्रपाल ! हे दिशाका मालिकहरू ! सत्यवती शहरको वृत्तान्त सुन्नुहोस्। त्यो परी धर्ममयी छ। त्यस शहरमा जति प्रजाहरू छन् ती सबै सत्यवादी, अतिथि सत्कार गर्ने, धर्मपरायण, शिवपूजनमा तत्पर, सत्य बोल्ने र धर्मशील छन्। यहाँका राजाले प्रजालाई निरन्तर धर्मपूर्वक पालना गरेका छन्। विभिन्न पूजासामग्रीद्वारा विधिवत् भगवान् पशुपतिको भक्तिपूर्वक पूजा गर्छन्। हे देवता हो ! यस शहरमा बस्ने ब्राह्मणहरू यज्ञ गर्नमा तत्पर छन्, सौम्य छन्, सधैं वेद पढ्छन् र सबै शास्त्र जानेका छन् ॥४०–४३॥

हे देवता हो ! यसरी नगरको चारैतिर घुमेर पाशुपती पुरीलाई हेरिसकेपछि म राजाको अष्टमङ्गलले युक्त भएको द्वारमा पुगें। बारम्बार आवाज निकाल्दै म ढोकामा घुमिरहेको थिएँ। राजाले मलाई अत्यन्त हँसिलो मुख लगाएर हेरे। सभामा बसेका धर्मात्मा ती राजाले बारम्बार घुमिरहेको भमरालाई देखेर मन्त्रीहरूसित भने – हे मन्त्री हो ! ढोकामा अत्यन्त मीठो आवाज सुनिन्छ। ज्यादै कालो वर्ण भएको कुनै जन्तु छ, त्यसलाई हेर्नुहोस्। भोकरूपी आगाले सताइएर त्यो मेरो ढोकामा आएको पो हो कि ! अथवा मह माग्न आएको पो हो कि ! हेनुहोस् त। यदि भोको छ भने यसलाई रसिला फूलहरू ल्याएर दिनुहोस् ॥४४–४७½ ।।

---

२५. सत्यवाचोऽर्हणातिथ्याः, इति न.सं.पु.पाठः ।	२६. निर्ह्लादयन्, इति न.सं.पु.पाठः ।
२७. बुद्धिक्षेम प्रपश्याशु, इति न.सं.पु.पाठः ।

मधु मां याचते चास्मै[२८] दद्याः सरसपुष्पकम् । निशम्य वचनं राज्ञः सुमन्त्री कुसुमं तदा ॥४८॥
मधुनाढ्यं महाफुल्लं[२९] वाटिकायाश्च मे ददौ । गृहाण मधुलिट् ! पुष्पं मकरन्दं पिबन् ध्रुवम् ॥४९॥
आगन्तुकोऽसि[३०] चातिथ्यैरर्हणीयोऽब्रवीदिति । धर्मेण पालयञ्चैवं राजाऽसौ नगरीं मुदा ॥५०॥
धर्मैश्च वर्तमानास्तास्तत्प्रजा मन्त्रिणः सुताः । कथं जेयो ह्यपापोऽसौ चास्माभिर्वद विघ्नकृत् ॥५१॥
न दृष्टं किल्विषं तेषां मनागपि परात्मनाम् ॥५२॥

स्कन्द उवाच

श्रुत्वा तद्वचनं देवाः प्रचक्रुर्मन्त्रणं मुने । आहूय नारदं सद्य इत्यवोचन् समादृतम् ॥५३॥

देवा ऊचुः

नारद धीमतां श्रेष्ठ नः कार्यं कुरु साम्प्रतम् । स्थास्यामो येन तस्यां वै सत्यवत्यां सुनिश्चितम् ॥५४॥
गत्वा तत्रेति वक्तव्यं राज्ञे तद् भवता मुने । द्राक्षामधुरया वाचा[३१] सामदानैश्च नीतिभिः ॥५५॥

स्कन्द उवाच

मनस्याधाय तत्प्रोक्तं त्रिदशैर्नारदो मुने । प्रययौ धर्मराज्यं वै गीतवाद्यमहोत्सवः ॥५६॥
प्रणम्य दण्डवद्भक्त्या पशुपं प्राप्य तां पुरीम् । अविशन्नारदो राज्ञ आस्थानञ्च मुदान्वितः ॥५७॥
विलोक्य[३२] नारदं राजा चोदतिष्ठद्धि तैः समम् । प्रणतास्यो मुनिं भक्त्या चोपावेशयदासने[३३] ॥५८॥
अभ्यर्च्य भूपतिर्दान्तमर्घ्याद्यैरुपहारकैः । अपृच्छत्कुशलं नम्रो लोकवार्ताञ्च देशजाम् ॥५९॥

---

राजाको यस्तो वचन सुनेपछि मन्त्रीहरूले खूबसित फक्रिएका र रसले भरिएका फूलहरू बगैंचाबाट ल्याएर मलाई दिँदै भने – हे भ्रमरा ! राजाले यस नगरीलाई सहर्ष धर्मपूर्वक पालना गर्नुभएको छ। तपाईं आगन्तुक (अतिथि) हुनुहुन्छ, पूजनीय हुनुहुन्छ भनेर राजाले भन्नुभएको छ। त्यसैले यो फूल लिनुहोस् र रसपान गर्नुहोस्। हे गणेश ! प्रजा, मन्त्री, पुत्रहरू पनि यस शहरमा धर्म अनुसार चलेका छन्। कसरी त्यस ठाउँमा गएर हामीले निष्पाप राजामाथि विजय गर्ने ? मैले त ती महात्माहरूको अलिकति पनि पाप देखिनँ ॥४८-५२॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! त्यसपछि ब्राह्मणको रूप धारण गर्ने इन्द्रको वचन सुनेर देवताहरूले आपसमा सल्लाह गरे र नारदमुनिलाई बोलाएर ल्याई सम्मानपूर्वक उनलाई भन्न लागे ॥५३॥

देवताहरूले भने – हे बुद्धिमान् नारदजी ! के गर्दा हामी सत्यवतीनगरीमा निश्चित रूपमा बस्न पाउँछौं, त्यो काम अहिले हजुरले गर्नुपर्‍यो। हजुर गएर त्यहाँका राजालाई साम, दाम, नीति र मीठो बोलीले फकाउँदै भन्नुपर्‍यो ॥५४-५५॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! देवताहरूले भनेको कुरालाई मनमा राखेर देवर्षि नारद गीत गाउँदै, बाजा बजाउँदै र ठूलो उत्सव गर्दै त्यस शहरमा जानुभयो। त्यहाँ पुगेर उहाँले भगवान् पशुपतिनाथलाई भक्तिपूर्वक दण्डवत् प्रणाम गर्नुभयो। नारदजी राजाको दरबारमा आनन्दसित प्रवेश गर्नुभयो। नारदलाई देख्नासाथ सभासदहरूका साथै राजा पनि तुरुन्तै आसनबाट उठे अनि झुकेर उनले ऋषिलाई प्रणाम गर्दै भक्तिपूर्वक आसनमा बसाले। अर्घ्य आदि सामग्रीद्वारा नारदजीको सत्कार गरेपछि राजाले विनम्रतापूर्वक संसारमा भएका घटनासँग सम्बन्धित विषयमा उहाँसित कुशल प्रश्न गरे ॥५६-५९॥

---

२८. याचितुञ्चास्मै, इति न.सं.पु.पाठः ।
२९. ललानाढ्यामधुत्फुल्लम्, इति न.सं.पु.पाठः ।
३०. आवेशिकोऽसि, इति न.सं.पु.पाठः ।
३१. गिरा मधुरयन् वाचम्, इति न.सं.पु.पाठः ।: ।
३२. प्रपश्य, इति न.सं.पु.पाठः ।
३३. चासने चोपवेशयेत्, इति न.सं.पु.पाठः ।

धर्मदत्त उवाच

स्वागतं भो मुनिश्रेष्ठ सर्ववृत्तान्तपारग। प्रकथय प्रवृत्तिं मे लोकानाममृतान्धसाम् ॥६०॥

नारद उवाच

शृणु राजन् ! प्रवक्ष्यामि यतोऽहमागतस्त्विह। तद् बीजं सर्वशस्तुभ्यं ब्रह्मादिभिः समीरितम् ॥६१॥
ब्रह्मा विष्णुश्च शक्रश्च नन्दी भृङ्गी विनायकः। क्षेत्रपालो हि दिक्पालाः सन्ति सिद्धाचले नृप ॥६२॥
कारणात् काशीराजस्य त्यक्त्वा काशीमिहाययुः। तैः प्रोक्तं खलु राजेन्द्र ! चाऽवधारय वच्मि ते ॥६३॥

देवा ऊचुः

श्लाघ्योऽसि सत्यमाधाय ! राज्यं करोषि वै यतः। विद्राव्य नः प्रभुत्वेन नोचितमिति ते नृप ॥६४॥
इदानीमपि नः स्थानं सन्त्यज्य स्वपुरीं नृप। विशालनगरीं सार्द्धं परिवारैः प्रगच्छतु ॥६५॥
ततो वयं तपिष्यामो यथापूर्वं सुखं नृप। त्वमपि च सुखं राज्यं करिष्यसि यथा पुरा ॥६६॥

स्कन्द उवाच

आकर्ण्य त्वरितं राजा देवानामीरितं वचः। नारदात् सम्भ्रमं मुक्त्वा[३४] प्रत्युवाच मुनिं पुनः ॥६७॥

धर्मदत्त उवाच

प्रथमञ्च नमस्कृत्य[३५] पशूनां पतयेऽनिशम्। त्रिदशेभ्यो मुने तुभ्यं वक्ष्याम्यहं वचस्ततः ॥६८॥
कथमेवेरितं देवैर्वचनं मे तथेदृशम्। भवन्ति ते समर्हण्याः पशुपतेश्च मूर्तयः ॥६९॥
देव्या दत्तमिदं राज्यं मे पशुपप्रसादतः। करोम्यहं सुखञ्चात्र यावत्तयोरनुग्रहः ॥७०॥
इहागत्य सुखं देवा तिष्ठन्तु नारदानिशम्। अर्हिष्याम्यर्चनैस्तान् वै श्रीमत्पशुपतेः समम् ॥७१॥

---

धर्मदत्तले भने – हे मुनिश्रेष्ठ नारद ! हजुर सबै वृत्तान्त जान्नुहुन्छ। दुनियाँ र देवताको के कस्तो प्रवृत्ति छ, त्यो मलाई बताउनुहोस् ॥६०॥

नारदले भन्नुभयो – हे राजन् ! म जुन कारणले यहाँ आएँ, त्यो कुरा बताउँछु, सुन्नुहोस्। म ब्रह्मा आदि गरिएका देवताहरूले पठाएर तपाईं भएको ठाउँमा आएको हुँ, यही नै म आउनाको मुख्य कारण हो। हे राजा ! अहिले ब्रह्मा, विष्णु, इन्द्र, नन्दी, भृङ्गी, विनायक, क्षेत्रपाल र दिक्पालहरू सिद्धाचलमा बसेका छन्। काशीराजको कारणले गर्दा काशीलाई छोडेर देवताहरू यहाँ आएका छन्। हे राजेन्द्र ! उनीहरूले जे भनेका छन्, त्यो कुरा बताउँछु, ध्यान दिएर सुन्नुहोस् ॥६१-६३॥

देवताहरूले भने – तपाईं प्रशंसनीय हुनुहुन्छ, सत्यलाई धारण गरेर राज्य गर्नुभएको छ। हामीहरूलाई भगाएर तपाईं राजा बन्नु राम्रो भएन। अब हाम्रो ठाउँ छोडेर आफ्ना परिवारका साथ विशालनगर नाम गरेको आफ्नो शहरमा जानुहोस्। त्यसपछि हामी पनि अघिजस्तै गरेर आनन्दसित तपस्या गर्नेछौँ। तपाईं पनि आफ्नो राज्यमा अघिजस्तै सुखसित बस्न पाउनुहुनेछ ॥६४-६६॥

कार्तिक स्वामीले भन्नुभयो – राजाले नारदबाट देवताले भनेको यस्तो कुरा सुनेर हडबडाएर मोहित हुँदै फेरि ऋषिलाई भने ॥६७॥

धर्मदत्तले भने – म पहिले भगवान् पशुपतिलाई निरन्तर नमस्कार गर्छु, त्यसपछि हे नारदमुनि ! देवताहरूलाई भन्नुपर्ने कुरा म तपाईंलाई बताउँछु। कसरी देवताहरूले यस्तो कुरा मसित भन्नुभयो ? भगवान् पशुपतिका लिङ्ग एवं मूर्तिहरू उहाँहरूका पनि पूजनीय हुनुहुन्छ। भगवान् पशुपतिको अनुकम्पाले भगवतीले मलाई यो राज्य दिनुभएको हो। जहाँसम्म उहाँहरूको अनुग्रह हुन्छ त्यहाँसम्म म यो राज्य गर्छु। यहाँ आएर देवताहरू आनन्दसित बस्नुभएमा म पशुपतिका साथै उहाँहरूको पनि पूजा गर्छु ॥६८-७१॥

---

३४. संभ्रमो मोह्य, इति न.सं.पु.पाठः।

३५. नमस्कार्यम्, इति न.सं.पु.पाठः।

साङ्गदेवार्चनं पुण्यं प्रोक्तं तपः परात्परम् । एतद्भाग्यात्परं भाग्यमन्यत् किमस्ति नारद ॥७२॥
अन्यद्राज्यं न काङ्क्षेऽहं त्यक्त्वैतन्नगरं मुने । अधिकृत्य कृतं स्वर्गं स्वर्णिमञ्चैव शूलिना ॥७३॥
यावदनुग्रहो देव्याः पशुपतेः समस्ति मे । तावदत्रैव स्थास्यामि[३६] भुञ्जन् परं सुखं मुने ॥७४॥
नाहं भीषयितुं शक्यश्चाऽपि देवैर्नरैः किमु । यावत्तयोः प्रसादो मे न त्यक्ष्यामि पुरीमिमाम् ॥७५॥

नारद उवाच

मामैवं भूप वक्तव्यं देवेभ्यो भवता कदा । राजञ्छृणु प्रवक्ष्यामि बीजं राज्यविसर्जने ॥७६॥
ब्रह्मविष्ण्वीश्वराणाञ्च न भेदोऽस्ति कदापि च । तथा गणगुहक्षेत्रदिक्पालनन्दिभृङ्गिणाम्[३७] ॥७७॥
ब्रह्मा विष्णुः स्वयं तत्र सिद्धाचले प्रतिष्ठितौ । नन्दिगुहगणक्षेत्रभृङ्गिदिगीश्वरैः समम् ॥७८॥
निवार्यते कथं राज्यं न जेया भवताऽमराः । अवश्यन्ते करिष्यन्ति राज्यं पाशुपतं खलु ॥७९॥
अन्नान्धसः सुधापाना न स्थास्यन्ति समं हि ते । तेऽन्नपुष्टाङ्गिनः पक्षे देवाश्चाऽमृतपायिनः[३८] ॥८०॥
ब्रह्मा ते काङ्क्षते द्वारं प्रवेष्टुं तपसेऽधुना[३९] । यो हि तिष्ठति जन्तूनां हृदये नलिनेषु वै ॥८१॥
येन विनाशिताः पूर्वं दैत्याः पापा विपक्षकाः[४०] । सोऽपेक्षते तव द्वारञ्चक्रायुधः समं गणैः ॥८२॥

---

हे नारद मुनि ! अङ्गसहित देवताको पूजा गर्नु सबैभन्दा पवित्र तपस्या भनिएको छ । यस्तो भाग्यभन्दा अर्को भाग्य के हुन्छ र ? हे नारद मुनि ! म भगवन् शङ्करले स्वर्गलाई दृष्टिमा राखेर सुवर्णमय तुल्याउनुभएको यस नगरलाई छाडेर अर्को स्थानमा राज्य गर्दिनँ । हे मुनि ! जहाँसम्म भगवान् श्रीपशुपतिनाथ र भगवतीको ममाथि कृपा रहन्छ त्यहाँसम्म आनन्दसित सुखभोग गरेर यो राज्य गर्छु । मलाई देवताले पनि त्रास पैदा गर्न सक्दैनन् भने मानिसको त के कुरा ? जहाँसम्म उहाँहरूको अनुग्रह हुन्छ त्यहाँसम्म म यो शहर छोड्दिनँ ॥७२–७५॥

नारदले भन्नुभयो – हे धर्मदत्त ! तपाईं देवताहरूलाई यसो नभन्नुहोस् । तपाईंले राज्य छोड्नुपर्ने के कारण छ, त्यो बताउँछु, सुन्नुहोस् । ब्रह्मा, विष्णु र महेश्वरका बीचमा कुनै पनि भेद छैन । त्यस्तै गणेश, कार्तिक स्वामी, क्षेत्रपाल, नन्दी, भृङ्गी र दिक्पालहरूका बीचमा पनि भेद छैन । नन्दी, कार्तिक स्वामी, गणेश, क्षेत्रपाल, भृङ्गी र दिक्पालहरूका साथमा ब्रह्मा र विष्णु स्वयं सिद्धाचलमा उपस्थित हुनुभएको छ । देवतालाई राज्य दिने कुरा नमानेर तपाईंले देवताहरूलाई कसरी जित्न सक्नुहुन्छ ? उनीहरूले अवश्य नै यो पशुपतिपुरीको राज्य गर्नेछन् ॥७६–७९॥

अन्न खाने मानिसहरू, अमृतपान गर्ने देवताहरूका साथ टिक्न सक्दैनन् । मानवीय शरीरका अङ्गहरू अन्नले पुष्ट हुन्छन् भने देवताहरू अमृतपान गर्छन् र अजर हुन्छन् । प्राणीहरूको हृदयकमलमा बस्ने ब्रह्मा पनि तपस्याको लागि तपाईंको राज्यमा प्रवेश गर्न चाहनुहुन्छ । जसले अघि पापी दैत्यहरूलाई संहार गर्नुभएको थियो, त्यस्ता चक्रधारी विष्णु पनि गणलाई साथमा लिएर तपाईंको द्वारको अपेक्षा गरिरहनुभएको छ ॥८०–८२॥

---

३६. तावदेनां करिष्यामि, इति न.सं.पु.पाठः ।
३७. तथा गणगुहक्षेत्रनन्दिभृङ्गिदिगीशिनाम्, इति न.सं.पु.पाठः ।
३८. निर्जरामृतभक्षकाः, इति न.सं.पु.पाठः ।
३९. ततप्सुश्च प्रवेशितुम्, इति न.सं.पु.पाठः ।
४०. दैत्यान् पापविपक्षकान्, इति न.सं.पु.पाठः ।

सो हि लम्बोदरो राजञ्चामर्षैः पूरितः स्थितः। येन विनाशितं पूर्वं जगद्धि सचराचरम् ॥८३॥
कार्तिकेयो महासेनस्ते द्वारं समवेक्षते। विदार्य येन[४१] शैलेन्द्रं तारकोऽसौ निपातितः ॥८४॥
नन्दी भृङ्गी तथा द्वारं काङ्क्षन्ते क्षेत्रनायकः। रुद्रशत्रुप्रहन्तारः प्रविविक्षन्ति निश्चयम्[४२] ॥८५॥
कालोऽसौ भैरवो दण्डी प्रविशतः पुरीमिमाम्। विश्वेश्वरस्य पार्श्वस्थौ प्रलयानलसन्निभौ ॥८६॥
इन्द्रादयो महावीरा दिग्पतयो रुषान्विताः। अत्रावश्यं प्रविश्यन्ति सावधानं शृणु प्रभो ॥८७॥
त्यक्तव्यं निश्चयं राज्यं भवतेदं प्रजापते। यत्रार्य सुस्थिरं स्थानं राज्यं तत्र विचिन्त्यताम् ॥८८॥
देवराज्यं न ते राजन्नर्हीति सुचिरं खलु। तपोऽर्जितमपीदं त्वं त्यक्त्वा परं व्रजिष्यसि ॥८९॥

स्कन्द उवाच

इत्युक्त्वा नारदो राज्ये प्रणम्य पशुपेश्वरम्। एतद्यशांसि[४३] गायन् वै ययौ यत्राऽमृतान्धसः ॥९०॥
विष्णुं प्रणम्य धातारं देवसंसदि कुम्भज। तत्सर्वं कथयामास कलहकारणात्मकः ॥९१॥
निशम्य तद्वचो देवा दुःखातुरास्तदाऽभवन्। हा सत्यवति ते प्रोचुर्निराशा गमने पुरे ॥९२॥
उवाच सहसा विष्णुः सम्प्रेक्ष्य तादृशान् सुरान्। माञ्च लम्बोदरञ्चापि प्रवेष्टुं तत्र प्रादिशत्[४४] ॥९३॥

विष्णुरुवाच

लम्बोदर ! समर्थोऽसि तत्र गत्वा त्वमेव हि[४५]। पुरद्वारं समुद्घाट्य विजित्य सैनिकान् पुरि ॥९४॥
त्वत्कृते च पुरद्वारे युद्धे देवैः समं हि तैः। वेलातीताच्च तद्धर्माद्[४६] विघ्नं तत्र भविष्यति ॥९५॥

---

हे राजन् ! जसले अघि सम्पूर्ण संसारलाई ध्वस्त पारेको थियो, तिनै गणेश अहिले क्रुद्ध भएर बस्नुभएको छ। जसले पर्वतलाई विदारण गरेर तारकासुर दैत्यलाइ नाश गर्नुभएको थियो, तिनै कार्तिक स्वामी तपाईंको ढोकामा हेरेर बस्नुभएको छ। भगवान् शङ्करको द्वेष गर्ने व्यक्तिलाई नाश गर्ने नन्दी, भृङ्गी र क्षेत्रपाल ढोकामा पस्न खोजेका छन्, अवश्य नै तिनीहरू त्यहाँ प्रवेश गर्न चाहन्छन्। भैरव नाम गरेका महाकाल लट्ठी लिएर यस शहरभित्र पस्दै हुनुहुन्छ। भगवान् शङ्करको दुबैतिर बस्ने पार्श्वचरहरू प्रलयको आगोजस्ता भएका छन्। इन्द्र आदि गरेका ठूला वीरहरू र दिशाका स्वामीहरू रिसाएका छन्। तिनीहरू अवश्य पनि यस नगरभित्र प्रवेश गर्नेछन्। हे राजा ! ध्यान दिएर सुन्नुहोस् ॥८३-८७॥

हे राजन् ! तपाईंले यो राज्य कुनै पनि हालतमा छोड्नै पर्छ। त्यसैले आफ्ना लागि सुरक्षित अर्को कुनै राज्यका बारेमा विचार गर्नुहोस्। देवताको यो राज्य धेरै समयसम्म तपाईंले भोग गर्न पाउनुहुन्न। तपस्याले कमाएको भए तापनि छोडेर अन्तै जानुपर्नेछ ॥८८-८९॥

कार्तिक स्वामीले भन्नुभयो – यति भनेर नारदजी त्यस राज्यमा रहनुभएका भगवान् शङ्करलाई नमस्कार गरी उहाँको कीर्ति गाउँदै देवताहरू बसेको ठाउँमा जानुभयो। हे अगस्त्य मुनि ! देवताको सभामा ब्रह्मा र विष्णुलाई प्रणाम गरेर कलहको बीऊ रोप्न सिपालु नारदजीले त्यो सबै कुरा बताउनुभयो ॥९०-९१॥

त्यो कुरा सुनेर सबै देवताहरू दुःखी भए। शहरमा प्रवेश गर्ने सन्दर्भमा हा सत्यवती ! भन्दै निराश भए। भगवान् विष्णुले त्यस अवस्थामा पुगेका देवताहरूलाई देखेर अकस्मात् गणेश र मलाई सत्यवती नगरीमा प्रवेश गर्ने आदेश दिँदै भन्न लाग्नुभयो। विष्णुले भन्नुभयो – हे गणेश ! हे कार्तिक स्वामी ! त्यहाँ गएर सैनिकमाथि विजय प्राप्त गरी शङ्करको ढोका उघारेर शहरभित्र पस्न तिमीहरू समर्थ छौ। देवताहरूका साथमा रहेर तिमीले ढोकेसित युद्ध गर्न थालेपछि मर्यादाको उल्लङ्घन गरेका कारण तिनीहरूलाई अवश्य विघ्न पर्नेछ ॥९२-९५॥

---

४१. येन विदार्य, इति न.सं.पु.पाठः।
४२. रुद्रद्वेषात्प्रहन्तारः प्राविशन्त्यत्र निश्चयम्, इति न.सं.पु.पाठः।
४३. रुद्रयशांसि, इति न.सं.पु.पाठः।
४४. लम्बोदराय मह्यञ्च प्रवेशाय समादिशत्, इति न.सं.पु.पाठः।
४५. निर्जित्य सकलान् गुह, इति न.सं.पु.पाठः।
४६. वेलातीतञ्च तद्धर्मम्, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

आकर्ण्य वचनं विष्णोः साधुसाध्ववदन् सुराः । सम्भूय प्रययुः सर्वे यत्र गुह्येश्वरी परा ॥९६॥
आप्लाव्य वाग्वतीतोये प्रणम्य दण्डवत् पराम् । भक्त्यानर्चुः प्रजेपुस्ते प्रार्थयन्तः पुरीञ्च ताम्[४७] ॥९७॥
मार्गकृष्णचतुर्दश्यां पर्यक्रामन् वरैर्युताः[४८] । प्राप्याज्ञां निर्ययुर्द्वारात् पुरद्वारं ययुः पुनः ॥९८॥
रुरुधुर्नगरीद्वारं ब्रह्मादयः समन्ततः । सिंहनादं प्रचक्रुस्ते शस्त्रास्त्राणि च प्राहरन् ॥९९॥
पुरीं संरुध्य दिक्पालाः समन्ततो यथाक्रमम् । नानास्त्राणि नगर्याञ्च क्षिपन्तो ववृषुर्मुहुः[४९] ॥१००॥
उषसि तदमावास्यां सन्त्यज्यायोधनं नृपः ॥१०१॥
पशुपतिं समभ्यर्च्य युयोध त्रिदशैः समम् ॥१०२॥
युयुधुस्ते मिथो देवैः नृपात्मजा भृशं सह । अहर्निशञ्च सप्ताहं नावकाशं प्रलेभिरे ॥१०३॥

लोमहर्षण उवाच

शृणुत विप्रशार्दूला विक्रमं देवयोर्महत् । गणकुमारयोस्तत्र सङ्ग्रामे लोमहर्षणे ॥१०४॥
मातृभी रक्षमाणोऽसौ नृपो देवैः प्रपीडितः[५०] । प्रार्थयामास त्राणाय भवानीपशुपेश्वरौ[५१] ॥१०५॥
नन्दी भृङ्गी तथा दण्डी क्षेत्रेशः कालभैरवः । सम्भूय युगपद् द्वारञ्चाऽविविशन् वरोद्धताः ॥१०६॥
प्रचक्रुः कदनं तत्र देवा रुषाऽन्विता भृशम् । अरक्षन् मातरस्तांस्तान् स्वैःस्वैरस्त्रैश्च वेगतः[५२] ॥१०७॥
मा मा प्रहरतैतान्[५३] भोः पुत्रा मद्रक्षकान् तथा । सम्प्रोक्ते युधि ताभिस्तान् जघ्नुः शश्वच्छरै रुषा ॥१०८॥
अविशतां पुरीं द्वाराद् गणाधिपशिखिध्वजौ । उद्यम्य परशुं शक्तिं कालाविव जगत्क्षये ॥१०९॥
प्रोद्धूय सगणौ लोकान् प्रशुष्य श्वासजानिलैः । मातृभी रक्षमाणास्ते चाऽपसृता इतस्ततः ॥११०॥

---

कार्तिक स्वामीले भन्नुभयो – भगवान् विष्णुको वचन सुनेर देवताहरू 'उहाँको भनाइ ठीक छ' भन्दै जहाँ भगवती गुह्येश्वरी बस्नुभएको थियो त्यसै ठाउँमा गए। वाग्वतीको जलमा स्नान गरेर तिनीहरूले भगवतीलाई त्यस नगरीको राजा हुन पाऔँ भनेर प्रार्थना गर्दै पूजा गरे, जप गरे। मार्गकृष्ण चतुर्दशीका दिन वर प्राप्त गरेर परिक्रमा गर्दै अनुमति लिई उनीहरू निस्किए र शहरको ढोकाभित्र गए। ब्रह्मा आदि गरेका देवताहरूले चारै दिशाबाट शस्त्र तथा अस्त्रको प्रहार गर्दै सिंहनाद गरे। दिक्पालहरूले क्रमअनुसार चारैतिरबाट शहरलाई घेरे र शहरमा विभिन्न किसिमका अस्त्रहरूको बारम्बार वर्षा गरे। त्यसै अमावास्याको दिन उषाकालमा पशुपतिको आराधना गरी शस्त्र–अस्त्र लिएर राजाले देवताहरूसँग युद्ध गरे। देवताहरूले राजाका छोराहरूसित सात दिनसम्म लडे तर त्यसको कुनै पार लागेन ॥९६–१०३॥

लोमहर्षणले भन्नुभयो – हे ब्राह्मण हो ! रोमाञ्च पैदा गर्ने त्यस सङ्ग्राममा गणेश र कुमारको ठूलो युद्ध भयो, त्यो कुरा सुन्नुहोस्। देवताहरूद्वारा पीडा दिइरहेका कारण योगिनीहरूद्वारा रक्षा गरिएका राजाले भने– 'हे भगवती ! हे पशुपतिनाथ ! रक्षा गर्नुहोस, रक्षा गर्नुहोस्' भनी प्रार्थना गरिरहेका छन् ॥१०४–१०५॥

नन्दी, भृङ्गी, दण्डी, क्षेत्रपाल, कालभैरव सबै मिलेर वरले उन्मत्त हुँदै त्यस शहरभित्र प्रवेश गरे ॥१०५॥ देवताहरूले रिसाएर त्यहाँका जनतालाई खूबसित पीडा दिए। योगिनीहरूले आफ्ना शस्त्र–अस्त्रद्वारा पनि तिनीहरूको रक्षा गरे। उनीहरूले हे छोरा हो ! मेरा रक्षक यिनीहरूलाई प्रहार नगर भनेर योगिनीहरूले भने, तैपनि उनीहरूलाई रिसाएर बाण प्रहार गरे। त्यसपछि गणेश र कुमार प्रलयको बेलामा कालजस्तै बनेर शक्ति अस्त्र उज्याएर शहरभित्र प्रवेश गरे। गणहरूसहित गणेश र कुमारले जनतालाई कम्पायमान गराउँदै र आफ्नो प्राणवायुद्वारा सबैलाई सुकाउँदै आक्रमण गरे। योगिनीहरूले रक्षा गरेको हुँदा उनीहरूको कुनै हानि भएन ॥१०६–११०॥

---

४७. लप्रार्थयन् नगरीञ्च ताम्, इति न.सं.पु.पाठः ।
४८. लब्धवराः प्रतिक्रमन्, इति न.सं.पु.पाठः ।
४९. ववर्षुः क्षेपयन्मुहुः, इति न.सं.पु.पाठः ।
५०. मातृभी रक्षमाणोऽसौ नृपान्देवैः प्रपीडने, इति न.सं.पु.पाठः ।
५१. त्राहि त्राहीति च प्रोक्तान् भवानी पशुपेश्वरः, इति न.सं.पु.पाठः ।
५२. संचरन्, इति न.सं.पु.पाठः ।
५३. प्रहारयेतान्, इति न.सं.पु.पाठः ।

आदाय वाग्वतीतोयं व्योम्न्युत्पपात सर्पभुक्। शक्त्या जघान तान् शश्वन्नीलकण्ठासनोऽम्बरात् ॥१११॥
प्रोड्डीय पक्षवातेन गगनस्थो भुजङ्गभुक्। अपातयच्च तान् भूमौ चञ्चुना वर्षयञ्जलम् ॥११२॥
वैश्वानरो ववर्षाजौ चाऽग्न्यासारान् खगो यथा। सर्वशो भुवि पेतुस्ते चाऽनिलानलपीडिताः ॥११३॥
निश्चेष्टतां गतान् लोकान्[५४] प्रेक्ष्य नृपो भयातुरः। त्राहि शङ्कर ! नोऽनाथान् मातर्देवि ! नमोऽस्तु ते ॥११४॥
तत्क्षणे कालिका देवी लिङ्गाद्विनिःसृता द्रुतम्। प्रेतस्थाऽष्टभुजा दंष्ट्री ललज्जिह्वा प्रकोपिता ॥११५॥
खड्गं चर्म त्रिशूलञ्च डमरुं पाशमङ्कुशम्। पानपात्रञ्च मुद्राञ्च दधाना च सृणिस्रजम् ॥११६॥
करालवदना भीमा साऽभिदुद्राव देवताः। ददाहोन्मीलनज्वलत्कालानलकणैर्मुहुः[५५] ॥११७॥
सम्प्रेक्ष्य कालिकां देवाः स्तुत्वा कालानलोपमाम्। परित्यज्य पुरीं भीत्या दुद्रुवुर्दक्षिणां दिशम् ॥११८॥
देव्या प्रसिच्यमानाभिः[५६] सुधाभिर्जीवितेषु च। स्वभक्तेषु च मर्त्येषु ब्रह्मविष्णू प्रधर्षितौ ॥११९॥
सुसम्भ्रमौ द्रुतं देवौ लिङ्गान्तिकं प्रजग्मतुः। ऊचतुः शूलिने सर्वं परिक्रम्य स्तवैः सह[५७] ॥१२०॥

ब्रह्मविष्णू ऊवाच

पञ्चात्मकाय रुद्राय पञ्चात्मभिः स्वशिल्पिने। पञ्चभिः पञ्चवक्त्राय पञ्चानां पतये नमः ॥१२१॥
पञ्चात्मकैश्च भूतानां स्रष्ट्रे च प्रत्यगात्मने[५८]। प्रपञ्चभूतये लोकलयाय पञ्चभिर्नमः[५९] ॥१२२॥
मातर्देवि नमस्तेऽस्तु भीमरूपे भयप्रदे। रक्ष रक्षाद्य नो गौरि ! कोपं क्षुद्रेषु संहर ॥१२३॥
विप्राः शृणुत तद्भूयः स्कन्दोक्तं कुम्भजन्मने। आकर्ण्य तद्वचोऽगस्त्य स्वीकारं कृतवान् हरः ॥१२४॥

---

वाग्वतीको जल लिएर मयूर आकाशमा उड्यो। मयूरमा बसेका कार्तिक स्वामीले आकाशबाट तिनीहरूमाथि शक्ति प्रहार गर्नुभयो। मयूरले आकाशमा उडेर पखेटाको हावा फ्याँकेर तिनीहरूलाई भूमिमा पछारिदिए। चुच्चाले पानी वर्साए। अग्निले पक्षीको जस्तै आचरण गरेर युद्धमा अग्निवर्षा गर्नुभयो। वायु र अग्निको ज्वालाले पीडित भए। ती सबै भूमिमा पछारिए। मानिसहरू चेष्टारहित भएको देखेर राजा डरले आत्तिए। हे शङ्कर ! हामी अनाथलाई रक्षा गर्नुहोस्, हे आमा ! हे देवी ! हजुरलाई नमस्कार छ ॥१११–११४॥

राजाको प्रार्थना सुनेर प्रेतमा चढेकी, आठ हात भएकी, चञ्चल जिब्रोले युक्त कालिका देवी रिसाउँदै तुरुन्त लिङ्गबाट आविर्भाव हुनुभयो। उहाँले तरवार, छालाको कवच, त्रिशूल, डमरु, पासो, अङ्कुसे, खप्पर, मुद्रा र मुण्डमाला धारण गर्नुभएको थियो। डरलाग्दो मुख भएकी ती भीमादेवी आगाका कणहरूले सबैलाई जलाउँदै देवता भएतिर खूबसित बलेको कालजस्तै बनेर दौडनुभयो। देवताहरूले कालअग्निजस्ती कालिकालाई देखेर स्तुति गरे, त्यसपछि शहर छोडेर डरले दक्षिण दिशातिर गए। देवीले अमृत छरेर आफ्ना भक्त भएका प्राणीहरूलाई बचाउनुभयो। त्यसपछि ब्रह्मा र विष्णुलाई छट्पटी भयो। हडबडाएर ब्रह्मा र विष्णु शिवलिङ्ग भएको नजिकै गए। उनीहरूले परिक्रमा गरेर बारम्बार स्तुति गर्दै शिवजीलाई भन्न लागे ॥११५–१२०॥

ब्रह्मा र विष्णुले भने – पाँच प्रकारका शरीरलाई धारण गर्ने, पाँचै प्रकारका कलाले युक्त भएका, पाँच मुख भएका, पञ्चतत्त्वका मालिकलाई नमस्कार छ। हे प्रभो ! तपाईं यिनी पाँच तत्त्वद्वारा प्राणीहरूको सृष्टि गर्नुहुन्छ र यिनै तत्त्वद्वारा नाश पनि गर्नुहुन्छ, यस्ता प्रपञ्च नै ऐश्वर्य भएका हजुरलाई नमस्कार छ। हे माता ! हे जगज्जननी ! पार्वती रूप लिएर डरलाग्दो र भयङ्कर रूप धारण गर्ने हजुरलाई नमस्कार छ। हे गौरी ! क्षुद्र हामीहरूमाथिको क्रोध शान्त गर्नुहोस्, हामीहरूलाई रक्षा गर्नुहोस्। कार्तिक स्वामीले ब्रह्मा, विष्णु आदि देवताहरूले माथि बताइएअनुसार शङ्कर र गौरीको जो स्तुति गरे त्यो सबै अगस्त्यलाई बताउनुभयो र भन्नुभयो – हे अगस्त्य मुनि ! देवताहरूको त्यस अनुरोधलाई भगवान् शङ्करले स्वीकार गर्नुभयो ॥१२१–१२४॥

---

५४. सुनिश्चेष्य गताल्लोकान्, इति न.सं.पु.पाठः।
५५. उन्मीलनज्वलत्कालानलेक्षाग्निकणैर्दहन्, इति न.सं.पु.पाठः।
५६. प्रसिञ्चमानेषु, इति न.सं.पु.पाठः।
५७. स्तुवन् मुहुः, इति न.सं.पु.पाठः।
५८. सुजाय त्वन्तरालगः, इति न.सं.पु.पाठः।
५९. लयाय पञ्चभिर्लोकान् प्रपञ्चभूतये नमः, इति न.सं.पु.पाठः।

देवदेव उवाच

अद्यैवार्या गमिष्यन्ति मद्भक्ताः सकला इमे[६०] । परिवारैः समं धाम राजानो मन्त्रिणः प्रजाः ॥१२५॥
मम भक्ताश्च हे देवौ[६१] न प्राप्स्यन्ति पराभवम् । योनौ पुनर्न जायन्ते मद्दर्शनात् कदापि च ॥१२६॥
देवीं पूजय विष्णोऽब्ज ! मातृसमर्हणैर्ध्रुवम् । सुनिर्विघ्ने ततो राज्ये स्थास्यतो विबुधैः समम् ॥१२७॥

स्कन्द उवाच

इत्युक्त्वा शङ्करस्तौ हि[६२] विरराम तदा मुने । पशुपतिं ततोऽभ्यर्च्य तौ प्रणम्य विनिःसृतौ ॥१२८॥
संभूय त्रिदशाः सद्यश्चाऽपूपुजन् हि कालिकाम् । मातृकाभिः समं भक्त्या बलिपूजोपहारकैः ॥१२९॥
मातृकासु प्रतुष्टासु यानं ददृशुः[६३] पुष्पकम् । सूर्यायुतनिभं देवाश्चाऽवतरन्महाम्बरात् ॥१३०॥
ततः सम्भूय तेऽगस्त्य ! नन्दिभृङ्गिमुखा गणाः । रुद्रवचोरताः प्रोचुर्गत्वा नृपान्तिकं तदा[६४] ॥१३१॥

प्रमथा ऊचुः

मा दुःखी भव[६५] राजेन्द्र ! सङ्ग्रान्नोऽपराधतः । क्षम्यतां हि न आगांसि परमेशवचः[६६] शृणु ॥१३२॥
एतद्राज्यप्रमाणन्ते चैतावत्कालमेव च[६७] । अस्मद्दत्तं हि राजेन्द्र ! विसर्जनमतः परम् ॥१३३॥
गच्छ राजन् ! परं धाम शिवलोकं[६८] सुखात्सुखम् । परिवारैः समं सर्वैर्यनिनाशु सविग्रहैः ॥१३४॥
कोटिजन्मार्जितैः पुण्यैः शिवभक्तिं विना नृप । प्राप्यते शिवलोकं न तद्धाम लब्धवान्[६९] भवान् ॥१३५॥
धन्योऽसि कृतकृत्योऽसि शिवभक्त ! शिवात्मक । तपोभिर्धाम दुष्प्रापं लब्धं त्वया च तत्परम् ॥१३६॥
स्थीयतां पुष्पके चाऽस्मिन् परिवारैः समं ध्रुवम् । भवन्तञ्च नयामोऽद्य शैवं कैवल्यभाजनम् ॥१३७॥

---

शङ्करले भन्नुभयो – हे आर्यहरू हो ! मेरा भक्त राजा, प्रजा तथा मन्त्रीहरू परिवारैसहित आज यहाँबाट मेरो धाममा जान्छन् । हे देवता हो ! मेरा भक्तहरूले कहिल्यै हार्नुपर्दैन । मेरो दर्शन गरे भने कहिल्यै पनि फेरि मर्त्ययोनिमा गएर जन्म लिनुपर्दैन । हे ब्रह्मा ! हे विष्णु ! देवीको पूजा गर । विभिन्न पूजासामग्री लिएर मातृकाहरूको पूजा गर, राज्यमा विघ्न हट्यो भने तिमीहरू देवताहरूका साथै आनन्दसित बस्नेछौ ॥१२५-१२७॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! तिनीहरूलाई यति भनेर भगवान् शङ्कर चुप्प लाग्नुभयो । तिनीहरू पनि भगवान् शङ्करको पूजा गरेर नमस्कार गर्दै बाहिर निस्किए । देवताहरूले जम्मा भएर मातृकाहरूसहित बलि, पूजा र भेटी चढाएर भगवती कालीको भक्तिपूर्वक पूजा गरे । मातृकालाई पूजा गरिसकेपछि दश हजार सूर्यको जस्तो कान्ति भएको पुष्पक विमान आकाशबाट ओर्लिरहेको देवताहरूले देखे । हे अगस्त्य मुनि ! त्यसपछि नन्दी, भृङ्गी आदि गरिएका देवताका गणहरू शिवजीको निर्देशन अनुसार राजाको नजिकै आए र उनलाई भने ॥१२८-१३१॥

प्रमथगणहरूले भने – हे राजेन्द्र ! युद्धमा भएका अपराधबाट चित्त नदुखाउनुहोस् । हाम्रा अपराधहरू क्षमा गर्नुहोस् । भगवान् शङ्करको भनाइ सुन्नुहोस् । तपाईंले यो राज्य गर्ने समय यत्ति नै थियो । यो ठाउँ पनि अहिलेसम्मका लागि मात्रै थियो । हामीले दिएको राज्य तपाईंले अब छोड्नुपर्छ । हे राजन् ! तपाईं अब हाम्रो सुखदायी लोकमा शरीरै सित परिवारलाई साथमा लिई यानमा चढेर तुरुन्तै जानुहोस् ॥१३२-१३४॥

हे शिवभक्त ! करोडौं जन्ममा गरेको पुण्य र शिवभक्तिविना शिवजीको जुन लोक प्राप्त गर्न सकिँदैन त्यो धाम तपाईं आज प्राप्त गर्दै हुनुहुन्छ । हजुर शिवस्वरूप हुनुहुन्छ । तपाईं धन्य हुनुहुन्छ, कृतकृत्य हुनुहुन्छ । तपस्याले प्राप्त गर्न नसकिने त्यो परमधाम हजुरले प्राप्त गर्नुभयो । आफ्ना परिवारहरूका साथ हजुर आनन्दसित यानमा बस्नुहोस् । हजुरलाई हामी मुक्तिको आश्रय शिवलोकमा लैजान्छौं ॥१३५-१३७॥

---

६०. समतः परम्, इति न.सं.पु.पाठः ।
६१. ममैव भक्तिनो देव्या, इति न.सं.पु.पाठः ।
६२. शङ्करस्तेभ्यः, इति न.सं.पु.पाठः ।
६३. ददर्श, इति न.सं.पु.पाठः ।
६४. रुद्रवचोरताः प्रोचुर्नृपन्तिकं समाव्रजन्, इति न.सं.पु.पाठः ।
६५. मा मा दुःखय, इति न.सं.पु.पाठः ।
६६. ईश्वरवचनम्, इति न.सं.पु.पाठः ।
६७. चैतावत्स्थानमत्र च, इति न.सं.पु.पाठः ।
६८. मम लोकम्, इति न.सं.पु.पाठः ।
६९. लभिता, इति न.सं.पु.पाठः ।

धर्मदत्त उवाच

न शक्नोमि परं त्यक्तुं[७०] पशुपतिं शिवाञ्च ताम्। वाग्वतीजलपीयूषं कथं त्यजे वदन्तु माम्[७१] ॥१३८॥
यज्ञार्चनतपोभिर्यद् दानधर्मैर्महत्तरैः। लप्स्यामहे च दुष्प्रापमेतद्[७२] भाग्यात् परं किमु ॥१३९॥
नन्दिन्! अवश्यं यास्यामो रुद्रलोकं महत्परम्। ईश्वरस्याज्ञया[७३] भृङ्गिन् सन्त्यज्येमां पुरीं खलु ॥१४०॥

स्कन्द उवाच

इत्युक्त्वा नृपतिर्लिङ्गं परिक्रम्यानमन्मुहुः। गुह्येश्वरीं समं लोकैस्तस्थौ याने हि सर्वशः ॥१४१॥
ववर्ष कुसुमासारं लाजासारं तदाम्बरात्। नेदुर्दुन्दुभयो व्योम्नि जयशब्दोऽभवत् पुनः[७४] ॥१४२॥
परिचार्य चतुर्वर्गैर्याने चाधाय भूपतिम्। निन्युः शिवपुरं शैवाः लोकदर्शनपूर्वकम्[७५] ॥१४३॥
तस्मिन् काले ततो लिङ्गाद्विश्वनाथो विनिःसृतः। लब्धवरो नमन् लिङ्गं काशीं जगाम तैः समम् ॥१४४॥
ततो ब्रह्मादयस्तस्यां सेवमानाः शिवं बभुः[७६]। भुञ्जानाः पूर्ववत् सौख्यं मुक्तज्वरा स्थिताश्चिरम्[७७] ॥१४५॥
न मुञ्चन्ति पुरीं दिव्यां त्रिदशा मुनयस्तदा। सिद्धाश्च योगिनो मर्त्या मृत्युं जित्वेश्वरार्चनात् ॥१४६॥
संस्थाप्य लिङ्गानि सुराश्च भक्त्या चाऽभ्यर्च्य लिङ्गं पशुपेश्वरं वै।
सन्त्यज्य नाकं खलु तेपिरे ते तस्यां सुवर्णालयशोभितायाम् ॥१४७॥
अध्यायमेनं सुधियो हि भक्त्या शृण्वन्ति चाधाय शिवं मनोऽब्जे।
माहात्म्यमाद्यं हि सरस्वतीजं मत्वा फलं ते परमं लभन्ते[७८] ॥१४८॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये धर्मदत्तशिवलोकगमनं नाम षट्षष्ट्युत्तरशततमोऽध्यायः ॥१६६॥

---

धर्मदत्तले भने – तर, म पशुपति र भगवती गुह्येश्वरीलाई त्याग गर्न सक्दिनँ। वाग्वतीको जलरूपी अमृत म कसरी छोडौँ ? हे प्रभु ! मलाई बताइदिनुहोस्। यज्ञ, पूजा, तपस्या, दान, ठूला-ठूला धर्म गरेर पनि जुन पद प्राप्त गर्न सकिँदैन, त्योभन्दा ठूलो उपलब्धि के हुन्छ र ? हे नन्दी ! हे भृङ्गी ! भगवान्‌को यस्तो आदेश छ भने यो शहरलाई छोडेर हामी अवश्य पनि उच्च रुद्रलोकमा जान्छौँ ॥१३८-१४०॥

कार्तिक स्वामीले भन्नुभयो – यति भनेर पशुपतिको लिङ्गलाई राजाले बारम्बार परिक्रमा गरे। त्यसैगरी गुह्येश्वरीलाई पनि चारैतिरबाट परिक्रमा गरे अनि विमानमा चढे। आकाशबाट फूल र लावाको वर्षा एकैचोटि भयो। नगराहरू आकाशमा बजे। फेरि जयगान भयो। सबै मानिसहरूलाई देखाउँदै धर्म, अर्थ, काम, मोक्ष चारैतिर राखेर राजालाई शिवका दूतहरूले शिवलोकमा लगे। त्यसै समयमा त्यही लिङ्गबाट भगवान् विश्वनाथ प्रकट हुनुभयो। लिङ्गलाई नमस्कार गरेर वर प्राप्त गरी विश्वनाथ देवताहरूका साथ काशी जानुभयो। त्यसपछि ब्रह्मा आदि गरिएका देवताहरू पहिले जस्तै गरी शत्रुबाट हुने तापबाट धेरै समयसम्म मुक्त भएर भगवान् शिवको सेवा गरी सुखसित बस्न थाले ॥१४१-१४५॥

देवता, ऋषि, सिद्ध, योगिनी र मानिसहरूले यस शहरलाई छाड्दैनन्। उनीहरू त्यहाँ भगवान् शङ्करको पूजा गरी मृत्युलाई जितेर बसेका छन्। देवताहरूले विभिन्न लिङ्गहरूको भक्तिपूर्वक स्थापना गरे, शिवलिङ्गको पूजा गरे। स्वर्गलाई छोडेर उनीहरूले त्यही सुवर्णमय मन्दिरले सुशोभित नगरमा आई तपस्या गरे ॥१४६-१४७॥

जुन बुद्धिमान् मानिसले शिवजीलाई हृदयमा राखेर भगवती सरस्वतीको मुखारविन्दबाट वर्णित पशुपतिज्योतिर्लिङ्गको आदिमाहात्म्यले युक्तभएको यस अध्यायलाई भक्तिपूर्वक सुन्दछन् तिनीहरूले शिवपदप्राप्तिरूप परम फल प्राप्त गर्छन् ॥१४८॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्ड नेपाल माहात्म्यमा धर्मदत्तको शिवलोकगमननामक
एकसय छैसट्ठिऔँ अध्याय पूरा भयो।

---

७०. किन्तु त्यक्तुमसामर्थ्यम्, इति न.सं.पु.पाठः।
७१. वद प्रभो, इति न.सं.पु.पाठः।
७२. दुष्प्राप्य तद्धि लप्स्याम एतद, इति न.सं.पु.पाठः।
७३. ईश्वरवचनाद्, इति न.सं.पु.पाठः।
७४. जयशब्दमभूत्पुनः, इति न.सं.पु.पाठः।
७५ सर्वलोकान् प्रदर्शयन्, इति न.सं.पु.पाठः।
७६. समासन् सेवयन् शिवम्, इति न.सं.पु.पाठः।
७७. यथापूर्वं सुखं भुञ्जन् मुक्तज्वरा अरेश्चिरम्, इति न.सं.पु.पाठः।
७८. प्राप्यन्ति मत्वा परमं फलं ते, इति न.सं.पु.पाठः।

# सप्तषष्ट्युत्तरशततमोऽध्यायः

## मृगरूपस्य भगवतः शिवस्याख्यानम्

अगस्त्य उवाच

कथं पाशुपती स्कन्द ! बभूव स्वर्णिमा पुरी[1] । त्रिदशानामधिष्ठात्री चतुर्वर्गप्रदायिनी ॥१॥
नगरस्सा कार्तिकेय ![2] कथमासीत् तपोवनी[3] । केनेयं निर्मिता पूर्वं स्वर्णरत्नमयी पुनः ॥२॥
काश्यधिका श्रुता त्वत्तश्चतुर्वर्गप्रदाऽभवत् । एतद्धि श्रोतुमिच्छामि तस्यां मुक्तश्च को वद ॥३॥

स्कन्द उवाच

समुद्भूतं यथा लिङ्गं[4] प्रव्यक्ते क्ष्मातलाचले । तुष्टुवतुर्ब्रह्मविष्णू स्वर्गं गन्तुं महेश्वरम्[5] ॥४॥
प्रसादं कुरु नो देव ! स्वर्गलोको प्रगम्यताम् । अनाथास्तत्र देवाः स्युस्त्वां विनेति मलीमसाः ॥५॥
आकर्ण्येशस्तयोर्वाक्यं व्याजहार वचो हरः । शृणुताद्धि हरे ! ब्रह्मन् ! मद्वचश्च समाहितौ ॥६॥
नाहं स्वर्गं गमिष्यामि सुखलाभे महत्यपि[6] । एतत्क्षेत्रं परित्यज्य कैलासं गोपुरं तथा ॥७॥
पवित्रितं मयैतद्धि मदुत्पत्तिर्यतो हरे । देव्याः परं रहःस्थानं विशेषान्मे पुनर्विधे ॥८॥
तपोवनमिदं स्थानं मत्प्रसादाद् भवेत्परम् । अहोरात्रतपःसिद्धा अत्रान्ये कोटिवर्षजाः[7] ॥९॥
येऽत्र मर्त्या भविष्यन्ति स्त्रियो देव्या मदङ्गिनः । मद्दर्शकाश्च प्राप्स्यन्ति[8] मत्सायुज्यं मृता इह ॥१०॥
अधिकृत्य त्रिलोकञ्च क्षेत्रमेतत् मया कृतम् । मध्यस्थोऽपि प्रसादान्मे सर्वोपरिगतो भवेत् ॥११॥

---

## अध्याय - १६७

### मृगरूप भगवान् शिवको आख्यान

अगस्त्य मुनिले भन्नुभयो – हे कार्तिक स्वामी ! कसरी पशुपतिको यो शहर सुवर्णमय भयो ? देवताहरूको निवासस्थल र धर्म, अर्थ, काम, मोक्ष यी चारै वर्गको दाता कसरी बन्न पुग्यो ? हे कार्तिक स्वामी ! यो शहर कसरी तपोवन भयो ? अघि सुन र रत्न जडेर कसले यसलको निर्माण गऱ्यो ? यो शहर काशीभन्दा पनि बढी धर्म, अर्थ, काम र मोक्षदायक छ भनेर तपाईंबाट सुनें । त्यहाँ कसले मुक्ति पायो ? यो सबै म सुन्न चाहन्छु, बताउनुहोस् ॥१-३॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! पृथ्वीको दुर्लभ क्षेत्र हिमालय पर्वतमा शिवलिङ्ग प्रकट भएपछि स्वर्ग जान लागेका ब्रह्मा र विष्णुले लिङ्गको स्तुति गरेका थिए । हे भगवान् ! कृपा गर्नुहोस् र स्वर्ग जानुहोस् । हजुरविना सबै देवताहरू स्वर्गमा मलिन मुख लगाएर बसेका छन्, तिनीहरू अनाथ भएका छन् ॥४-५॥

ती दुईको वचन सुनेर भगवान् शङ्करले भन्नुभयो – हे ब्रह्मा ! हे विष्णु ! मेरो वचन सावधान भएर सुन । म यो क्षेत्रलाई छाडेर जतिसुकै सुख पाए पनि स्वर्ग जान्न, कैलास जान्न र गोलोकमा पनि जान्न । हे विष्णु ! हे ब्रह्मा ! मैले नै यस ठाउँलाई पवित्र तुल्याएको छु । विशेष गरी यो देवीको एकान्तस्थल हो भन्ने बुझ्नुहोस् । मेरो अनुग्रहले गर्दा यो वन तपस्थली बनेको छ । यस ठाउँमा एक अहोरात्र मात्र तपस्या गऱ्यो भने जुन सिद्धि प्राप्त हुन्छ, त्यो फल अन्यत्र करोडौं वर्ष तपस्या गर्दा पनि उपलब्ध हुँदैन । जुन पुरुषहरू र स्त्रीहरू यहाँ जन्मन्छन्, ती सबै मेरा र देवीका अङ्ग हुन् । यहाँ मेरो दर्शन गर्ने सबै मानिसहरूले मरेपछि मुक्ति पाउँछन् । मैले यो क्षेत्रलाई तीनै लोकको राज्य बनाएको छु । यो पृथिवीको माझमा रहे पनि मेरो अनुग्रहले गर्दा यो सबैभन्दा उत्कृष्ट बनेको छ ॥६-११॥

---

१. स्वर्णमयी पुरी भवेत्, इति न.सं.पु.पाठः ।
२. सा नगरी च सेनानी !, इति न.सं.पु.पाठः ।
३. तपोवनी कथं भवेत्, इति न.सं.पु.पाठः ।
४. यथा समुद्भवं लिङ्गम्, इति न.सं.पु.पाठः ।
५. ऊचतुर्ब्रह्मविष्णू तौ स्वर्गं गन्तुं स्तुवन्मुने, इति न.सं.पु.पाठः ।
६. भवेन्महत्सुखं परम्, इति न.सं.पु.पाठः ।
७. अहोरात्रतपःसिद्धमत्रान्यत्कोटिवर्षजाम्, इति न.सं.पु.पाठः ।
८. मद्दर्शका लभिष्यन्ति, इति न.सं.पु.पाठः ।

स्कन्द उवाच

रुद्रवचः समाकर्ण्य ब्रह्मा विष्णुश्च तद्वने। कार्त्तिकीपूर्णिमायान्तौ तेपाते शिवभक्तितः ॥१२॥
तत्रागत्य ततो देवा दिक्पालाश्चन्द्रपूषणौ। सम्पूज्य विधिवल्लिङ्गं सहस्राब्दं प्रतेपिरे ॥१३॥
सप्तर्षयो मुने ! साकं नारदाद्यैर्मुनीश्वरैः। स्नात्वेश्वरं समभ्यर्च्य वाग्वत्यां किल तेपिरे ॥१४॥
सम्भूय त्रिदशास्तत्र मुनिभिः सह तेपिरे। यस्माद्धि नगरीभूता तस्मात्तपोवनी ह्यभूत् ॥१५॥
विश्वकर्मा ततस्तत्र पशुपतेः समाज्ञया। नानारत्नैर्हिरण्यैश्च चकार नगरीं पराम् ॥१६॥
तस्मात्स्वर्णपुरी ज्ञेया स्वर्णमयी गृहोत्तमा। अध्यासन् त्रिदशास्तस्यां तस्मात्स्वर्णमयी पुरी ॥१७॥
धर्मार्थकाममोक्षाँश्च प्राप्स्यन्ति तत्पुरौकसः। चतुर्वर्गप्रदा तस्माद्धर्मात्मानः शिवार्चकाः ॥१८॥
तत्रैव च पुरा मुक्ता मृगात्मानो नृपात्मजाः। मन्त्रिपुत्रेण सार्धं वै हरिणस्योपदेशतः ॥१९॥

अगस्त्य उवाच

क एते भूपतेः पुत्राः कश्चासौ मन्त्रिणः सुतः। मृगाङ्गानि कथञ्चापुर्भूत्वा भूपालजा अपि ॥२०॥
पशुरूपैश्च तैर्लब्धं सुनिर्वाणमहो कथम्[९]। ज्ञानैर्विवर्जितैः शश्वत् तन्मे बीजं वद प्रभो ॥२१॥

स्कन्द उवाच

यद्वृत्तान्तं पुरा भूतं कुम्भयोने ! शृणु ध्रुवम्। मृगाणां तत्र संवादं सिद्धारण्योत्तमे मिथः ॥२२॥
चित्रलोमा सुलोमा च हर्षलोमा तथापरः। सूक्ष्मलोमा मृगा आसन् चारुलोमा च पञ्चमः ॥२३॥
राधसिततृतीयायां चारुलोमा वने भ्रमन्[१०]। स्तनकुण्डे पयः पीत्वा सोऽतिष्ठत् सह तैः श्रमात् ॥२४॥

---

कार्तिक स्वामीले भन्नुभयो - भगवान् शङ्करको भनाइ सुनेर ब्रह्मा र विष्णुले कार्तिक पूर्णिमाको दिन शिवलाई भक्तिपूर्वक सम्झिएर त्यहाँ तपस्या गरे। त्यसपछि देवता, दिक्पाल, चन्द्रमा, सूर्य त्यहाँ आए। विधिपूर्वक शिवलिङ्गको पूजा गरेर एक हजार वर्षसम्म तपस्या गरे। नारद आदि गरिएका ऋषिहरूका साथ आएका सप्तर्षिहरूले वाग्वतीमा स्नान गरी भगवान् शिवको पूजा गरे र तपस्या गरे। सबै देवताहरूले मुनिहरूसँग मिलेर त्यहाँ तपस्या गरे। त्यसै कारणले गर्दा यो शहर भएर पनि तपोवन बन्न पुग्यो ॥१२-१५॥

हे अगस्त्य मुनि ! विश्वकर्माले भगवान् पशुपतिको निर्देशन अनुसार विभिन्न रत्न र सुवर्णले झकिझकाउ भएको एक उत्तम शहर बनाए। त्यसैले उत्तम घरहरूले युक्त भएको यो नगरी स्वर्णमयी बनेको छ। यहाँ देवताहरू बसेका छन्, त्यसैले पनि यसलाई स्वर्णपुरी भनिएको हो। त्यस शहरमा बस्ने मानिसहरूले धर्म, अर्थ, काम र मोक्ष चारै वर्गको फल प्राप्त गर्छन्। त्यसैले धर्मात्मा ती शिवपूजकहरूका लागि यो शहर चारै वर्गको फलदाता मानिएको छ। यसै पुरीमा हरिणको उपदेश अनुसार मन्त्रीको छोराका साथ मृगस्वरूप भएका राजाका छोराहरू अघि मुक्त भएका थिए ॥१६-१९॥

अगस्त्य मुनिले भन्नुभयो - यी राजाका छोराहरू भनेका को हुन् ? मन्त्रीको छोरो भनेको को हो ? कसरी तिनीहरू राजाका छोरा भएर पनि मृग बन्न पुगे ? ज्ञान नभएका तिनीहरूले पशुरूप भएर पनि कसरी मुक्ति पाए ? हे प्रभु ! त्यसको कारण मलाई स्पष्ट हुने गरी बताउनुहोस् ॥२०-२१॥

कार्तिक स्वामीले भन्नुभयो - हे अगस्त्य मुनि ! अघि उत्तम सिद्धारण्यमा मृगहरूको एउटा संवाद भएको थियो, त्यो घटना म तपाईंलाई बताउँछु, सुन्नुहोस्। चित्रलोमा, सुलोमा, हर्षलोमा, सूक्ष्मलोमा र चारुलोमा नाम गरेका पाँचवटा मृगहरू थिए। वैशाखशुक्ल तृतीयाका दिन तिनीहरूलाई साथमा लिएर वन घुम्दै चारुलोमा मृगले स्तनकुण्डको जल पियो ॥२२-२४॥

---

९. सुनिर्वाणं समत्र वै, इति न.सं.पु.पाठः।
१०. परिभ्रम्य वनं मृगः, इति न.सं.पु.पाठः।

उमायाः स्तनकुण्डस्य विदूरे तैः समं कुजम्। अध्यासीच्चारुलोमासौ बुद्धिमान् देशिको मृगः ॥२५॥
परिवारेषु तं तेषु रोमन्थसंस्थितेषु ते। उदासीनमुखं प्रेक्ष्य चापृच्छन् कारणं हि तत् ॥२६॥

मृगा ऊचुः

दीनमुखो भवान् भूत्वा सन्तिष्ठसि कथं सखे। रोमन्थनं न कुर्यास्त्वं सुस्वादजीर्णभक्षणम् ॥२७॥
नो न सम्भाषसे किञ्चिन्मलीमसाञ्चिताननः। चारुलोमन् ! सखे किन्ते हृद्यागतं हि नो वद ॥२८॥
अथवेदं वनं त्याज्यं किं भयं समुपस्थितम्[११]। स्थानं बहुसुखैराढ्यं परं सोपद्रवं[१२] त्यजेत् ॥२९॥
उपद्रवैर्युतं राज्यं स्वामिनो यत्र हिंसकाः। त्यजेदाशु प्रजा[१३] राज्यमतिभूमिः सुखप्रदा ॥३०॥

चारुलोमो उवाच

न त्याज्यं काननञ्चेदं मनसापि कदाङ्गिभिः। बहुसुखप्रदञ्चैतद् भुक्तिमुक्तिप्रदं हि नः ॥३१॥
किन्तु बीजं प्रवक्ष्यामि यस्माद्दीनमुखं मम। श्रूयतामिह सर्वैर्हि मत्तः पूर्वोद्भवा कथा[१४] ॥३२॥
अङ्गाख्ये नगरे भूपश्चासीद्धिरण्यदः श्रुतः। हिरण्यं प्रददौ नित्यं द्विजातिभ्यस्ततः स्मृतः ॥३३॥
रसापतेः सुता यूयं चत्वार आस्त सौख्यदाः[१५]। तन्मन्त्री रौप्यदो नाम जनको मे विचक्षणः ॥३४॥
विमाता सुन्दरी वश्च राज्ञः प्रियतमानिशम्। राज्यं दातुं स्वपुत्राय विचारे संस्थिता मुहुः ॥३५॥
हत्वा वः सर्वशो राज्यं दातुं पुत्राय[१६] चिन्तिता। राजानं स्वसुतं दृष्ट्वा भवेयं सुखिनी कदा[१७] ॥३६॥

---

उमादेवीको स्तनकुण्डदेखि केही टाढा रहेको स्थलमा त्यो बुद्धिमान् चारुलोमा नाम गरेको मृग एउटा रुखको फेदमा बस्यो। सबै परिवारका मृगहरू वरिपरि बसेर उग्राउन थालेका बेला त्यस मृगले निन्याउरो मुख लगायो र चुप लागेर बस्यो। त्यो देखेर अरु मृगहरूले त्यसो गर्नाको कारण सोधे ॥२५-२६॥

मृगहरूले भने – तपाईं किन यस्तो मलिन मुख लगाई चुप्प लागेर बस्नुभएको छ ? खाएको स्वादिलो खाना चबाएर तपाईं किन उग्राउनु हुन्न ? हे चारुलोमा ! हे साथी ! तपाईंको मुख मलिन छ। तपाईं हामीसित किन बोल्नु हुन्न ? तपाईंको हृदयमा के छ ? त्यो हामीलाई भन्नुहोस्। अथवा यहाँ कुनै डरलाग्दो स्थिति पो आयो कि? त्यसैले यो वनै पो छोड्नुपर्छ कि ? किनभने जतिसुकै सुख भए पनि जुन ठाउँमा उपद्रो हुन्छ, त्यस ठाउँलाई छोड्नुपर्छ। जहाँ राज्य नै आतङ्कले युक्त छ र स्वामीहरू नै हिंस्रक छन् भने त्यस्तो राज्यलाई प्रजाहरूले तुरुन्त छोडिदिनुपर्छ। त्यो ठाउँ छोडेर अन्त जान तिनीहरूका लागि सुखदायी हुन्छ ॥२७-३०॥

चारुलोमाले भन्यो – मनले पनि यो वनलाई शरीरधारीले कहिल्यै छोड्नुहुन्न। यसले हामीलाई भुक्ति तथा मुक्ति दिन्छ। तर, म किन अँध्यारो मुख लगाएको छु ? त्यसको कारण म सबैलाई बताउँछु। पहिले भएको एउटा कथा छ, त्यो सुन। अङ्ग नाम गरेको शहरमा एउटा हिरण्यद नाम गरेका राजा थिए। उनले ब्राह्मणहरूलाई धेरै सुन दान गरे, त्यसैले तिनको नाम हिरण्यद रहेको थियो। तिनै राजाका चित्रलोमा, सुलोमा, हर्षलोमा र सूक्ष्मलोमा, तिमीहरू चारजना छोरा थियौ। तिनै राजाका प्रबुद्ध मन्त्री मेरा बुबा रौप्यद हुनुहुन्थ्यो। तिमीहरूकी सौतेनी आमा राम्री थिइन् र तिमीहरूका पिता राजा हिरण्यदकी सधैँ प्रिय थिइन्। उनी आफ्नो छोरालाई कसरी राज्य दिलाउने भन्ने विषयमा बारम्बार चिन्ता गरेर बसेकी थिइन्। तिमीहरू सबैलाई मारेर आफ्नो छोरालाई कसरी राज्य दिने र छोराहरूलाई सुखपूर्वक राज्यभोग कसरी कहिले गराउने भन्ने कुराले उनी सदा चिन्तित थिइन् ॥३१-३६॥

---

११. नो भयोपस्थितो वद, इति न.सं.पु.पाठः।
१२. यत्र चोपद्रवम्, इति न.सं.पु.पाठः।
१३. प्रजास्त्यक्त्वाशु तद्, इति न.सं.पु.पाठः।
१४. शृणुध्वमिह राजानो मत्तः पूर्वोद्भवां कथाम्, इति न.सं.पु.पाठः।
१५. यूयं बभूवुश्चतुरो भवत्, इति न.सं.पु.पाठः।
१६. दत्त्वात्मजाय, इति न.सं.पु.पाठः।
१७. भोजयिष्ये सुखं पुत्रं भविष्यामि कदेति सा, इति न.सं.पु.पाठः।

चत्वारो भ्रातरः प्रौढा जाता इति सुदुःखिता[१८] । एवं वश्चिन्त्यमानायां तस्यां वै मातरि प्रभो ॥३७॥
एकदा दिवसे मन्द[१९] हयानारुह्य तद्वयम् । स्वराज्यभ्रमणे याता[२०] माल्यमण्डनभूषिताः ॥३८॥
सा प्रेक्ष्यति स्म नो दृश्य[२१] प्रासादस्थातिसुन्दरी । गवाक्षेण तदा चिन्तामकरोत्तदधैर्यगा ॥३९॥
सखीं द्रुतं परित्यज्य चान्तःकोपा च पद्मिनी । निर्वचनं ययौ कोष्ठाभ्यन्तरं विजना रहः ॥४०॥
सर्वद्वाराणि संवार्य सशब्दं सार्गलानि च[२२] । पर्यङ्केऽशीशयद्राज्ञी रुषान्विता च नः प्रति ॥४१॥
श्रुत्वा तद्वचनं सख्यू राजा सुसम्भ्रमाद् ययौ । तद्द्वारान्तिकमेकाकी तस्याः प्रेमोत्सुको वशी ॥४२॥

राजोवाच

प्रिये सुन्दरी ! चैतत्किमागतं हृदि ते ध्रुवम् । द्वारं रुध्वा दृढं शेषे पर्यङ्के मौनिनि ! किमु ॥४३॥
तवाधीनमिदं सर्वं मद्रूपं नगरी शुभा[२३] । दशकोटिनिधिश्चैव किन्ते सुदुर्लभं वद ॥४४॥

चारुलोमोवाच

निशम्य वचनं सख्यास्तादृशं मधुरस्वरम् । स्वागतञ्चेति कृत्वा सा बभाषे वचनं पुनः ॥४५॥

पद्मिन्युवाच

एवञ्चेद्भाषसे राजन् ! ममाधीनोऽभवद् भवान् । शपथैः क्रियतां सत्यं विश्वासो जायते मयि ॥४६॥

राजोवाच

शतानां महिषीणाश्च त्वमेवासि गरीयसी । कथं न ज्ञायसे भीरु सुविस्मृताऽसि तत्कलाम् ॥४७॥
प्राणैः धनैस्तथा राज्यैर्गरीयसी त्वमेव च । त्वां विना नास्ति कश्चिन्मे सत्यं सत्यं वदाम्यहम् ॥४८॥

---

चार भाइहरू उमेरदार भएको देखेर उनी अत्यन्त दुःखी भइन् । यसरी तिमीहरूकी सौतेनी आमा चिन्ताकुल भइरहेकी थिइन् । एक दिन माला तथा अलङ्कारहरू लगाई हामीहरू घोडा चढेर आफ्नो राज्यमा बिस्तारैसित घुमिरहेका थियौँ । त्यो बेला अति सुन्दरी ती सौतेनी आमाले हामीहरूलाई शहरमा घुमिरहेको अवस्थामा दरबारको झ्यालबाट देखिन् र उनले धैर्य छोडिन् । तुरुन्त सँगिनीहरूलाई त्यसै ठाउँमा छोडेर ती पद्मिनी भित्रभित्रै रिसाइन् । नबोलीकन एक्लै एकान्त कोठाभित्र पसिन् । आग्लो हालेर चुकुल लगाई आवाज आउने गरी सबै ढोका बन्द गरिन् । हामीसित रिसाएर रानी पलङमा सुतिन् भन्ने सखीहरूबाट सुने र हड्बडाउँदै प्रेमले विह्वल भएर जोइटिङ्ग्रे राजा एक्लै ढोकाको नजिकै पुगे ॥३७–४२॥

राजाले भने – हे सुन्दरी ! तिम्रो मनमा के लाग्यो ? किन एक्लै मौन भई ढोका लगाएर पलङमा सुत्यौ ? यो मेरो शरीर तिम्रै अधीनमा छ, मेरो रूप तिम्रै वशमा छ, यो शहर तिम्रै हो, दश करोडको सम्पत्ति पनि तिम्रै हो, नपुग्दो के छ ? भन ॥४३–४४॥

चारुलोमाले भन्यो – राजाको त्यस्तो कुरा सुनेर मीठो स्वरमा रानीले स्वागत गरिन् र फेरि भनिन् ॥४५॥

पद्मिनीले भनिन् – हे राजन् ! यदि यसो हो भने तपाईं मेरो अधीनमा हुनुभएको छ । पहिले यसको किरिया खानुस् अनि मात्र मलाई विश्वास हुनेछ ॥४६॥

राजाले भने – मेरा सयवटा रानीमध्ये तिमी सबैभन्दा श्रेष्ठ रानी छ्यौ । हे कातर सुन्दरी ! तिमीलाई यो कुरा थाहा छैन र ? यो कुरा तिमीले कसरी बिर्सियौ ? प्राण, धन, राज्य सबै थोकबाट तिमी नै माथि छ्यौ, तिमी नभईकन मेरो कोही हुँदैन, म सत्य–सत्य भन्छु ॥४७–४८॥

---

१८. प्रौढान् भवतः प्रेक्ष्य दुःखिता, इति न.सं.पु.पाठः ।
१९. राजन्, इति न.सं.पु.पाठः ।
२०. स्वराज्यं भ्रमयामः स्म, इति न.सं.पु.पाठः ।
२१. ध्योऽङ्ग, इति न.सं.पु.पाठः ।
२२. संवार्य सकलान् द्वारान् सशब्दं सार्गलान् बहु, इति न.सं.पु.पाठः ।
२३. नगरीमिमाम्, इति न.सं.पु.पाठः ।

पद्मिन्युवाच

किञ्चिद्याचे हि कार्यं त्वां तवाधीनमिदं प्रिय ! । शपथैः क्रियतां सत्यमहं यद्यपि ते प्रिया[२४] ॥४९॥

राजोवाच

मूर्तयश्चाष्टमूर्तेर्हि साक्षिण्यः सन्ति सर्वदा । शुभाशुभकृतानान्तत् प्रपश्यन्ति त्वहर्निशम् ॥५०॥
यद्येवं याचसे मां त्वं त्वदीप्सितञ्च सुन्दरि । ददामि साम्प्रतं तत्ते चावश्यं वद मे प्रिये ॥५१॥

चारुलोमोवाच

इत्याकर्ण्य वचो राज्ञः पद्मिनी नृपतिं तदा । तत्कपाटं समुद्घाट्य प्रावेशयत्स्वकान्तिकम् ॥५२॥
सत्यवाग् ! भो विभो त्वञ्च ह्यासने स्थीयतां प्रिय । इति कृत्वाशु सा राज्ञी चार्द्रयामास तं पतिम् ॥५३॥

पद्मिन्युवाच

एवञ्चेत्ते प्रिय ! स्वान्ते त्वत्पुत्राणां शिरांसि च[२५] । क्रुद्धसापत्नपुत्राणां मह्यं सञ्छिद्य दीयताम्[२६] ॥५४॥
अभिषिच्याशु मत्पुत्रं राज्यमस्मै प्रदीयताम् । दीनाय तत्कनिष्ठाय भवादृशाय भूपते ॥५५॥
एवं भवति चेद् राजन् ! यद्यपि क्रियते हि तत् । जीवति त्वत्प्रिया सौख्यमन्यथा म्रियते द्रुतम्[२७] ॥५६॥

चारुलोमोवाच

आकर्ण्य वचनं तस्याः कटुकमप्रियं नृपः । श्रवणमस्पृशत्सद्यः शिव शिव वदन् मुहुः ॥५७॥
निःसंज्ञश्च क्षणं स्थित्वा दग्धाङ्गो वचनैर्हि तत् । पपात विह्वलाङ्गोऽसौ वज्राहतद्रुमो यथा ॥५८॥
भूयोऽवदद्धि सा राज्ञे चाशक्तश्चेद् भवान् प्रिय । जीवित्वा किं मया जीवः पश्य पश्य न धार्यते ॥५९॥
निशम्य वचनं पत्न्या भूयोऽवदत् प्रियंवदः । निःश्वस्य दीर्घनिश्वासं वाष्पेक्षणः सवेपथुः ॥६०॥

---

पद्मिनीले भनिन् – म तपाईंसित केही कुरा माग्छु । त्यो गर्नुपर्ने कार्य तपाईंको अधीनमा छ, यद्यपि म तपाईंकी प्यारी छु, तैपनि पहिले किरिया खानुहोस् ॥४९॥

राजाले भने – शिवजीका आठवटा मूर्तिहरू र रात तथा दिनले मानिसले गरेका शुभ तथा अशुभ कार्यहरू हेरिरहेका हुन्छन् । हे सुन्दरी ! यदि तिमी मसित यसो भन्छ्यौ भने तिमीलाई इच्छा लागेको वस्तु भन । हे प्रिये ! म अहिल्यै दिन्छु ॥५०–५१॥

चारुलोमाले भन्यो – राजाको यस्तो वचन सुनेर रानी आफ्नो कोठाको ढोका खोलेर भित्र लगी राजालाई आफ्नो नजिकै राखिन् । त्यसपछि हे मेरा प्यारा ! हे अन्तर्यामी ! हजुर सत्यप्रतिज्ञ हुनुहुन्छ, यस आसनमा बस्नुहोस् । भन्दै ती चतुर पद्मिनीले फकाई आसनमा बसालिन् र उनलाई अफ्नो अनुकूल बनाई भन्न लागिन् ॥५२–५३॥

पद्मिनीले भनिन् – हे प्यारा ! यदि तपाईं मैले भनेको मान्नुहुन्छ भने मेरो मनभित्रको कुरा बताउँछु । साँच्चै नै मैले भनेका कुरा दिने भए तपाईंबाट जन्मेका मेरा सौताका सबै छोराहरूको शिर काटेर अहिल्यै मलाई दिनुहोस् र अविलम्ब मेरो छोरालाई राज्याभिषेक गरेर यो राज्य दिनुहोस् । यो मेरो छोरो सबैभन्दा कान्छो भएर पनि तपाईंजस्तै सरल छ । हे महाराज यदि यसो हुन्छ र हजुरले मैले भनेअनुसार गर्नुहुन्छ भने तपाईंकी प्रियतमा जिउँदै रहनेछे होइन भने छिट्टै यसले आत्महत्या गर्नेछे ॥५४–५६॥

चारुलोमाले भन्यो – पद्मिनीको अत्यन्त अप्रिय, कठोर वचन सुनेर राजाले तुरुन्तै शिव ! शिव ! यो के सुन्नुपऱ्यो भन्दै कान समाते । अतिशय पीडाले एकछिन त राजा मूर्च्छित जस्तै भए । रानीका वचनले उनलाई असाध्यै व्याकुल बनाए । विह्वल हुँदै वज्र लागेको रुखजस्तै गरी भूमिमा पछारिए । त्यसपछि फेरि रानीले राजालाई भनिन् – हे प्रिय ! तपाईं मैले भनेअनुसार गर्न असमर्थ हुनुहुन्छ भने म यो प्राण धान्न सक्दिनँ, म तुरुन्तै मरिहाल्छु । पत्नीको यस्तो बोली सुनेर मृदुभाषी राजाले लामो लामो सास फेरे र आँखाभरि आँसु टिलपिल पारेर थुरथुर काम्दै भन्न लागे ॥५७–६०॥

---

२४. चतुर्णानां शिरोऽधुना, इति न.सं.पु.पाठः ।
२५. यद्यपि मां प्रियां तव, इति न.सं.पु.पाठः ।
२६. सञ्छिद्य दीयतां मह्यं सपत्नीपुत्रकोपिनाम्, इति न.सं.पु.पाठः ।
२७. निधना भवेत्, इति न.सं.पु.पाठः ।

राजोवाच

धिगिति मे वदिष्यन्ति पत्नीहेतोर्नृपेण च। छित्वात्मजशिरांस्यात्मनिन्दनं भुवि साधितम्[२८] ॥६१॥
सर्वस्वं त्वत्सुतायाहं राज्यं रत्नानि हस्तिनः। हयाँश्च पट्टवासांसि प्रदास्याम्यधुना प्रिये ॥६२॥
मैवमेतद्धि वक्तव्यं कुत्सितं लोकनिन्दकम्। तच्छिरसाञ्च मौल्येन सर्वं दास्यामि ते प्रिये ॥६३॥

पद्मिन्युवाच

सत्येन धार्यते चापि चानन्तेन रसामिमाम्। सत्येन धार्यते सूर्यश्चन्द्रोऽनिलोऽनलस्तथा ॥६४॥
मूर्त्तिभिरष्टमूर्तेश्च ह्यद्यापि धार्यते जगत्। सत्यैस्तपोधनैश्चैव नृपैश्च तत्प्रसेविभिः ॥६५॥
सत्यं हित्वा भवान् तन्न रक्षति यदि कैतवात्। भवादृशोऽपि कुत्रापि न दृष्टं साम्प्रतं मुखम्[२९] ॥६६॥
सुतथ्यविमुखो यर्हि भवान् भवेद्धि साम्प्रतम्। न प्रेक्षे त्वन्मुखं दुष्टं त्यक्त्वासून् परमं व्रजे ॥६७॥

राजोवाच

असवो नैव त्यज्यन्तां[३०] कुर्वे कर्म त्वदीरितम्। स्तुवन्तु मे च निन्दन्तु सत्यं धार्यं हि मानुषैः ॥६८॥

चारुलोमोवाच

इत्युक्त्वा निर्ययौ ताञ्च राजा बहिस्त्वरान्वितः। तेभ्योऽब्रवीत्तदैकान्ते समाहूयाधिकारिणः ॥६९॥

राजोवाच

वराः शृणुत मद्वाक्यं परच्छिद्रेक्षणोत्सुकाः। अस्मिन्काले वनं गत्वा नः कार्यं कुरुत ध्रुवम् ॥७०॥
मृगयायै गतेषु मे सामात्येषु सुतेषु च[३१]। छित्वा शिरांसि पञ्चानां रह आनीय यच्छत[३२] ॥७१॥

---

राजाले भने – पत्नीको स्वर्थपूर्ण वचनको पालना गर्नका लागि राजाले आफ्ना छोराहरूको शिर काटेर कान्छी पत्नीलाई दियो र संसारमा आत्मनिन्दाको मार्ग खुला गरिदियो भनी मलाई दुनियाँले धिक्कार्नेछन्। हे प्रिया ! तिम्रा छोरालाई राज्य, रत्न, हात्ती, घोडा, पट्टवस्त्र आदि सर्वस्व अहिले नै दिन्छु। तिनीहरूको शिरको मूल्य बराबरका सबै कुरा दिन्छु तर दुनियाँले निन्दा गर्ने खालको यस्तो कुरा मसित नमाग ॥६१–६३॥

पद्मिनीले भनिन् – सबै चीज सत्यमा नै अडिएको छ। पृथ्वीलाई पनि भगवान् अनन्तले सत्यद्वारा नै धारण गर्नुभएको छ। सूर्य, चन्द्रमा, वायु, अग्नि सबै सत्यमा नै अडिएर टिकेका छन्। शिवजीका मूर्तिहरूले आजसम्म पनि संसारलाई सत्यद्वारा नै धारण गरेका छन्। उहैंको सेवा गर्ने तपस्वी राजाहरूले पनि सत्यकै बलमा संसारको शासन चलाएका छन्। सत्यलाई छोडेर तपाईंले कपट गरी आफूले पहिले दिएको वचन पालन गर्नुहुन्न भने तपाईंलाई धेरै पाप लाग्नेछ। तपाईंजस्ता अवसरवादी अहिलेसम्म मैले अरू कोही देखेकी छैन। जब तपाईं सत्यको विपरीत लागेर विमुख हुनुभयो अब तपाईंको दुष्ट मुख हेर्दिनँ, मलाई रीस उठेको छ। बरु प्राण छोडेर परमधाम जान्छु ॥६४–६७॥

राजाले भने – हे देवी ! प्राण नछोड, चाहे मानिसले प्रशंसा गरून् अथवा निन्दा गरून्, तिमीले भनेको काम म गर्छु, किनभने मानिसहरूले सत्यलाई धारण गर्नुपर्छ अर्थात् सत्य छाड्नुहुँदैन ॥६८॥

चारुलोमाले भन्यो – रानीलाई यति भनेर राजा तुरुन्त बाहिर गए। एकान्तमा अधिकारीहरूलाई बोलाएर उनीहरूलाई निर्देशन दिँदै भन्न लागे ॥६९॥

राजाले भने – अर्काको छिद्र पत्ता लगाउन सिपालु भएका हे श्रेष्ठ अधिकारी हो ! अहिले नै तिमीहरूले वनमा गएर हाम्रो काम गर्नुपर्‍यो। मन्त्रीलाई साथमा लिएर मेरा चारभाइ छोराहरू शिकार खेल्न गएको बेलामा एकान्त पारेर ती पाँचै जनाको शिर काटेर लिएर आओ ॥७०–७१॥

---

२८. छित्वात्मजशिरांस्यार्या दत्तं यस्या इति प्रिये, इति न.सं.पु.पाठः।
२९. भवादृशोऽपि यः काश्चिदसत्भिर्न दृश्यते मुखम्, इति न.सं.पु.पाठः।
३०. मा त्यज्यतामसून् देवि, इति न.सं.पु.पाठः।
३१. मे समन्त्रिषु, इति न.सं.पु.पाठः।
३२. दीयताम्, इति न.सं.पु.पाठः।

चारुलोमोवाच

निशम्य वचनं राज्ञो दुःखदग्धाश्च तेऽभवन्। हा कष्टेति च कृत्वा तच्छासनस्था वनं ययुः ॥७२॥
मृगयासक्तचित्तेषु चास्मासु किङ्करा[३३] ययुः। अवरुध्य पृथक् वस्ते प्रजघ्नुरसिभी रहः ॥७३॥
नः शिरांसि समादाय वासोभिस्ते ह्यवेष्टयन्[३४]। ददुः पित्रे च ते राजन्! पूर्वाह्णे रहसि ध्रुवम् ॥७४॥
राजा शिरांसि नस्तस्यै गृहाणेति वदन् ददौ। मयि तुष्यतु[३५] निर्मूले चेत्युक्त्वा विरराम हि ॥७५॥
भाद्रशुक्लचतुर्थ्यां सा चाधाय सम्पुटे पृथक्। नः शिरांसि स्वकन्याभिर्नो कलत्रेषु प्रापयत्[३६] ॥७६॥
उमाव्रतकृशाङ्गीभ्यः स्नुषाभ्यः प्रेषितोपदा[३७]। एतैः फलैश्च कुर्वन्तु पारणं रचने व्रज ॥७७॥
तत्सम्पुटानि समादाय गत्वा नो हि प्रियान्तिकम्। ददौ ताभ्यस्तदा तानि पुनरित्यब्रवीत्[३८] तद्वचः ॥७८॥
पद्मिनीप्रेषिता साऽत्र कुरुत पारणानि च। तद्व्रतैः कर्शिता यूयमेतैः फलैर्वदन्त्यगात् ॥७९॥
श्वश्र्वा दत्तानि चास्मभ्यमार्यया पारणाय च[३९]। फलान्येतानि कृत्वेति जगृहस्ता मुदा हृदा[४०] ॥८०॥
तान्यभिवन्द्य वः पत्न्यो देव्यै न्यवेदयन्[४१] खलु। प्रीतास्तु न उमादेवी चेति कृत्वा निवेदितम् ॥८१॥
प्रियेभ्यः किल दास्यामः चैतद्देव्याः प्रसादकम्। विररमुश्च कृत्वेति चोमाव्रतविकिल्विषाः ॥८२॥
मृतसञ्जीविनी देवी तत्र तस्मिन् क्षणे वने। अजीवयदुमा सा नश्चामृतैः सेचयन्त्यपि[४२] ॥८३॥

---

चारुलोमाले भन्यो – राजाको त्यो कुरा सुनेर ती अधिकारीहरू अत्यन्त दुःखित भए। कस्तो दुःखदायी काम गर्नुपर्‍यो भन्दै राजाको आदेश पालना गर्न उनीहरू वनमा गए। हामीहरू शिकारमा व्यस्त थियौं। त्यसैबेला ती राजसेवकहरूले हामीलाई छुट्टाछुट्टै एकान्तस्थलमा छेकेर तरवारले काटे। हे राजन्! हाम्रो शिर लुगामा बेरेर ल्याई बिहानीमा एकान्त पारेर तिम्रा बुबालाई दिए। राजाले हाम्रा शिरहरू लगेर तिमीहरूकी सौतेनी आमालाई लौ लेऊ भन्दै दिए र अब रीसको कुनै कारण नभएकी तिमी तिम्रो खुसीका लागि आफ्नो वंश नै नाश गर्ने ममाथि खुसी हो ऊ भनेर राजा चुप लागे ॥७२–७५॥

भाद्रशुक्ल चतुर्थीका दिन ती बाठी रानीले हामीहरूका पाँचवटै शिर बेग्लाबेग्लै टपरीमा राखी आफ्ना सेविकाहरूका हात हामीहरूका स्वास्नीहरूलाई पठाएर भनिन् – उमाको व्रतले दुब्लाएका बुहारीहरूका लागि रचना नामकी केटीका हात उपहार पठाइन् र भनिन् –हे रचना त त्यो उपहार लिएर छिटै जा। काटिएको शिर राखेका टपरी लिएर त्यो केटी दुलहीहरूका नजिक गई। पाँचै टपरी तिनीहरूलाई दिएर भनी– यी फलहरू पद्मिनी रानीले पठाउनुभएको छ, तपाईंहरू व्रत गरेर साह्रै दुब्लाउनुभएको छ, यिनै फलहरू खाएर पारण गर्नुहोस्। यति भनेर त्यो केटी फर्किई ॥७६–७९॥

हे राजन्! तिनीहरूले पनि सासूज्यूले पठाउनुभएको हो भन्ने ठानेर ती फलहरू आदरपूर्वक ग्रहण गरे। ती व्रतालु पत्नीहरूले पनि ती शिरलाई फल सम्झिएर उमादेवीको अगाडि हे उमादेवी हामीसित प्रसन्न हुनुहोस् भनेर नैवेद्य लगाए। हाम्रा लोग्नेहरू वनमा शिकार खेलेर भोकाएर आउलान्, यो देवीको प्रसादफल तिनीहरूलाई दिउँला भनेर टपरीसमेत नउघारीकन उमाव्रतले विशुद्ध र निष्पाप भएका ती पाँचै जना भोक तथा प्यास सहेर बसिरहे। यो देखेर मृतसञ्जीवनी उमादेवीले वनमा काटिएर लडेका गिँडहरूमाथि अमृत वर्षा गरेर उनीहरूलाई बचाइदिनुभयो ॥८०–८३॥

---

३३. वनदा, इति न.सं.पु.पाठः।
३४. वासोभिर्वेष्टयंश्च ते, इति न.सं.पु.पाठः।
३५. तोषय, इति न.सं.पु.पाठः।
३६. अप्रेषयच्च पत्निषु, इति न.सं.पु.पाठः।
३७. उमाव्रतकृशाङ्ग्यस्ता मे स्नुषा रचनेऽधुना, इति न.सं.पु.पाठः।
३८. इत्यऽब्रवीच्च, इति न.सं.पु.पाठः।
३९. श्वश्र्वा दत्तं समस्मभ्यमार्यया मातरोऽधुना, इति न.सं.पु.पाठः।
४०. ताभिरग्राहिषन्नृप, इति न.सं.पु.पाठः।
४१. निवेदिताः, इति न.सं.पु.पाठः।
४२. सेचयन्मुहुः, इति न.सं.पु.पाठः।

सुप्तोत्थिता वयं तद्वद्यथापूर्वं महत्सुखम्। स्वं स्वमश्वं समारुह्य प्राप्तवन्तः[४३] स्वमन्दिरम् ॥८४॥
ताभिः फलानि दत्तानि भुक्तवन्तस्तदा वयम्। नारिकेलफलान्यार्याः स्वादूनि मधुराणि च ॥८५॥

मृगा ऊचुः

सेचनाच्च कथं देव्या[४४] सञ्जीविता वयं सखे। नो मूर्द्धानः कथं भुक्ताः तन्नारिकेलतां गताः ॥८६॥
पशुयोनिः कथं लब्धा चास्माभिः किल निन्दिता। भूत्वा राजसुता धीमन्नेतत्सर्वञ्च नो वद ॥८७॥

चारुलोमोवाच

उमाव्रतप्रभावान्नः पत्नीनां तद्व्रतौजसाम्। देव्या सञ्जीविताः पुण्यात्प्रसिञ्चन्त्यामृतैर्वयम् ॥८८॥
तद्व्रतप्रभया नो हि मूर्द्धानः फलतां गताः। भुक्तवन्तो वयं तानि तदा राजन् सुनिश्चयम् ॥८९॥
छिन्नमुण्डा[४५] वयञ्चैवं नृपमुखेन तत्र वै। तथापि वेदनां तीव्रां नजानीमो व्रतेन वै ॥९०॥
नः पत्न्यः पश्यतेमा वै कुलस्त्रियोऽनुगाः सदा। तद्व्रतप्रभया शश्वद्धरिण्यश्च प्रियंवदाः[४६] ॥९१॥
सप्तवर्षं समारभ्य चामरणावधि प्रभो। उमाव्रतानि चक्रुर्वै मृग्यश्चेमाः स्त्रियो हि नः ॥९२॥
केवलं संवृताः[४७] ताभिर्वयञ्च पतयो हृदा। उमादेव्या न निर्वाणं जग्मुर्नैव स्त्रियोऽनिशम् ॥९३॥
तदन्ते भूप ! लक्षाब्दं रुद्रलोके महत्सुखम्। अवसाम सहैताभिः महत्[४८]पुण्यप्रभावतः ॥९४॥
क्षीणे पुण्ये ततो राजन् ! प्रपतिता वयं भुवि। सार्वभौमेश्वराः भूत्वाऽभुङ्क्ष्महि[४९] तत् सुखं पृथक् ॥९५॥
भूत्वा नराः सकृच्चापि पशुपतेरदर्शनात्। हारिणाङ्गानि चैतानि[५०] प्राप्तवन्तो वयन्त्विह ॥९६॥

---

हामी आनन्दसित सुतेर उठेजस्तै भयौँ र पहिलेका जस्तै बन्यौँ। आ–आफ्नो घोडामा चढेर आ–आफ्ना घरतिर गयौँ। हामीले पत्नीहरूले दिएका फलहरू मीठो, स्वादिलो नरिवलको फल भन्ने ठानेर खायौँ ॥८५॥

एउटा मृगले भन्यो – हे मित्र ! देवीले अमृतको सेचन गरेर हामीलाई कसरी बचाउनुभयो ? हामीहरूले आफ्नो–आफ्नो शिर कसरी खायौँ ? शिर कसरी नरिवलमा परिणत भयो ? हामीले राजाको छोरा भएर पनि निन्द्य यो पशुयोनि कसरी पायौँ ? यो सबै बताउनुहोस् ॥८६–८७॥

चारुलोमाले भन्यो – पत्नीहरूले गरेको उमाव्रतका प्रभाव र पुण्यले गर्दा अमृतसेचन गरेर देवीले हामीलाई बचाउनुभयो। उमाकै व्रतका प्रभावले गर्दा हाम्रा टाउकाहरू नरिवलका फल बने। हामीले नरिवलको फल हो भन्ने निश्चय गरेर ती शिरहरू खायौँ। त्यसरी राजाको आदेश अनुसार हाम्रा टाउका गिँडिएका भए पनि फेरि उठ्दा उमाव्रतको पुण्यको प्रभावले गर्दा हामीहरूलाई तीव्र वेदनाको अनुभव भएन ॥८८–९०॥

हे मित्र हो ! हाम्रा कुलीन स्त्रीहरूलाई हेर। यी सधैँ हाम्रा अनुगामिनी भएर रहेका छन्। उमाव्रतका प्रभावले गर्दा प्रत्येक जन्ममा यिनीहरू हाम्रा अनुगामिनी भएर आउँछन् र अहिले मीठो बोल्ने हरिणीका रूपमा हामीसित रहेका छन्। सातवर्षको उमेरदेखि मरुञ्जेल़सम्म उमाव्रत गरेको हुँदा यिनीहरू पनि मृगको चोला लिएर हाम्रा पत्नीका रूपमा मृगिणी भएर बसेका छन्। मृगिणीका हृदयद्वारा हामी पतिका रूपमा वरण गरिएका छौँ। हाम्रा यी स्त्रीहरू मुक्त नभएसम्म सधैँ उमादेवीमा तल्लीन भएर रहन्छन्। त्यसपछि पुण्यको प्रभावले सपरिवार लाखौँ वर्षसम्म अत्यन्त सुखभोग गरेर हामी रुद्रलोकमा बस्यौँ। हे राजन् ! पुण्य सकिएपछि हामीहरू पृथ्वीलोकमा आयौँ र चक्रवर्ती राजा भएर विभिन्न सुखको भोग गर्‍यौँ। मनुष्यचोला लिएर एकपटक पनि पशुपतिको दर्शन नगरेको हुँदा हामीले यहाँ मृगरूप भएर जन्मनुपर्‍यो ॥९१–९६॥

---

४३. चाजग्मिमः, इति न.सं.पु.पाठः।
४४. कथं देव्या प्रसिंच्या नः, इति न.सं.पु.पाठः।
४५. साकारिता, इति न.सं.पु.पाठः।
४६. शश्वज्जन्मनि च प्रियंवदः, इति न.सं.पु.पाठः।
४७. वर्णितम्, इति न.सं.पु.पाठः।
४८. अवस्यामः परिवारैश्च मम, इति न.सं.पु.पाठः।
४९. सार्वभौमपतिर्भूत्वा, इति न.सं.पु.पाठः।
५०. एतान्यङ्गानि तस्मादवै, इति न.सं.पु.पाठः।

वनान्तरं भ्रान्तवन्तः[५१] क्षुत्पिपासाभयाकुलाः । तद्धर्मप्रभया चेह प्राप्तवन्तो वयं पुनः ॥९७॥
तपोवनीं विदुर्लोके सिद्धारण्यामिमां स्थलीम् । मुक्तिमूलमिदं क्षेत्रं सर्वलोकैः प्रसेवितम् ॥९८॥

मृगा ऊचुः

एतत्क्षेत्रं वरिष्ठञ्च कथं जातं मृगोत्तम । भवान् वेत्ता कथञ्चात्र पूर्वजन्मोद्भवां कथाम् ॥९९॥
सन्त्यज्याङ्गानि चैतानि नृपकलेवराणि वै । प्राप्स्यामश्च[५२] कथं भूयस्तत्सर्वं वद नः सखे ॥१००॥

चारुलोमोवाच

देव्याः शिखरवासिन्याः स्तनकुण्डामृतं सखे । एतत्प्राश्य पुरोद्भूतां प्रवृत्तिं ज्ञातवानहम् ॥१०१॥
पीयतां जीवनं पुण्यं तस्मिन्[५३] कुण्डे सुहृद्गणाः ! । पूर्ववार्ताञ्च जानीत तस्मात्कृताकृतं यथा ॥१०२॥

स्कन्द उवाच

आकर्ण्य वचनं तत्र चारुलोममुखाच्च्युतम् । चत्वारो हि मृगाः सद्यः साधु साध्विति मेनिरे ॥१०३॥
सङ्गत्य सहसा सर्वे स्तनकुण्डामृतं पपुः । आनन्दिता मुहुर्हर्षात्तदङ्गखर्जनोत्सुकाः ॥१०४॥
हर्षौदासीन्ययुक्ताङ्गा जलपानावबोधकाः । अबूबुधन्मृगाः सर्वां वार्तां जन्मान्तरोद्भवाम् ॥१०५॥
सम्भूय ते मृगाः सद्यः पूर्वजन्मावबोधकाः । आद्यमृगान्तिकं गत्वा लेहयन्तो मिथोऽवदन्[५४] ॥१०६॥

---

त्यसपछि भोक, प्यास र डरले आत्तिदै हामीहरू वनमा घुम्न थाल्यौँ तर पूर्वजन्मको पुण्यका प्रभावले गर्दा हामीहरू फेरि यही स्थलमा आइपुग्यौँ । सिद्धहरूले सेवा गरेको यो भूमि तपोवन हो र मुक्तिको क्षेत्र हो । यसलाई सबैले श्रद्धापूर्वक सेवा गर्छन् ॥९७–९८॥

मृगहरूले भने – हे मृग ! यो क्षेत्र अत्यन्त श्रेष्ठ छ, तपाईंले पूर्वजन्मको कुरा कसरी थाहा पाउनुभयो ? यो मृगको चोलालाई छोडेर हामीले कसरी मानिसको चोला पाउनेछौँ ? हामीलाई यो सबै कुरा बताइदिनुहोस् ॥९९–१००॥

चारुलोमाले भन्यो – देवीको शिरमा रहेको स्तनरूपी अमृतले भरिएको घडा छ । त्यसलाई पान गरेपछि म ज्ञानी भएको हुँ । तिमीहरू पनि त्यस कुण्डमा जाओ र त्यसलाई पान गर अनि पहिलेका अर्थात् पूर्वजन्मका सबै वृत्तान्त थाहा पाउनेछौ ॥१०१–१०२॥

कार्तिक स्वामीले भन्नुभयो – चारुलोमाको मुखबाट निस्किएको त्यो कुरा सुनेर चारैवटा मृगले तुरुन्त आफूलाई धन्य सम्झे सबै मिलेर तुरुन्त गई स्तनकुण्डको अमृतपान गरे । त्यसपछि बारम्बार शरीर कन्याउँदै उनीहरू हर्षले आनन्दित भए । हर्ष र उदासीन भए तापनि अमृत पान गरेपछि ज्ञानी भएका मृगहरूले पूर्वजन्मको सबै वृत्तान्त थाहा पाए । पूर्वजन्मको वृत्तान्त सबै थाहा पाउने ती मृगहरू जम्मा भएर प्रथम मृग शिवको नजिकै गए र उनलाई परस्पर चाटचाट गर्दै सम्पूर्ण वृत्तान्त बताए ॥१०३–१०६॥

---

५१. भ्रमाम स्म, इति न.सं.पु.पाठः । ५२. लभिष्यामः, इति न.सं.पु.पाठः ।
५३. तत्र अस्मिन्, इति न.सं.पु.पाठः । ५४. तमूचुर्लेहयन् मिथः, इति न.सं.पु.पाठः ।

मृगा ऊचुः

हास्यास्पदानि गात्राणि[५५] ह्यमूनि नो विभो ध्रुवम्[५६]। सततं लोकनिन्द्यानि ज्ञानैर्विवर्जितानि च ॥१०७॥

त्वं वेत्ता सर्ववार्त्तानां नो देशिकस्त्वमेव च। एते निन्द्याः कदा देहा अस्मान् मुञ्चन्ति भो वद[५७] ॥१०८॥

चतुरशीतिलक्षासु योनिषु सङ्गता वयम्[५८]। भुक्तवन्तो महाकष्टं[५९] तत्तदुत्पत्तिभिस्तदा ॥१०९॥

ज्ञानरसाञ्जनैः पुण्यैर्भवान् बाह्यशलाकया। अञ्ज्यान्नेत्राणि चास्माकं[६०] यास्यामः परमं कदा ॥११०॥

स्कन्द उवाच

तच्छ्रुत्वा वचनं तेषामादिमृगो महेश्वरः। ज्ञानसक्तांश्च सम्प्रेक्ष्य हरिणात्मापि हर्षवान् ॥१११॥

आशुतोषोऽवदत्तान् हि मृगरूपेण संसदि। त्र्यक्षःस्मिताननो भक्तान् सर्वजीवदयाकरः ॥११२॥

आदिमृग उवाच

एवमेवं हि संसारः प्राणवतां[६१] मृगोत्तमाः। गम्भीरनीरसंसारः सततं निधनोद्भवः ॥११३॥

भवारण्ये महाकूपे[६२] लोकाः क्रीडन्ति शर्मभिः। विषयग्राहसन्दष्टा अविवेकधियो[६३] मृगाः ॥११४॥

परमांसपरार्थानां ग्रहणे केचनोत्सुकाः[६४]। जन्मान्ते तादृशाः पापा हन्यन्ते च सपीडनम्[६५] ॥११५॥

अंहोभिर्लोमसङ्ख्यातैः कोलरूपाणि बिभ्रति[६६]। पशवः पापिनोऽजस्रं भ्रमन्ति च भवादृशाः ॥११६॥

---

मृगहरूले भने – उमादेवीको स्वरूपलाई देखेर हाँस्दै निन्दा गर्ने अज्ञानी व्यक्तिलाई लोकले सधैं निन्दा गर्छ। यो साँचो हो, यसमा शङ्का छैन। तपाईं सबै कुरा थाहा पाउनुहुन्छ। यस्तो निन्द्य पुरुषको शरीरलाई कहिले त्याग गर्छौं ? कृपया हामीलाई बताइदिनुहोस्। हे प्रभो ! चौरासी लाख योनिमा उत्पन्न भएर हामीहरूले तत्तत् योनिमा त्यसबखत अनेक कष्ट भोग गरेका छौं। जसरी बाहिर गाजल लगाउँदा आँखाको शोभा बढ्छ त्यसरी नै ज्ञानरसको गाजलरूपी पुण्यका प्रभावले हामी कहिले परमपदमा पुग्न सक्छौं ? ॥१०७–११०॥

कार्तिक स्वामीले भन्नुभयो – त्यो कुरा सुनेर ज्ञानका निमित्त उत्सुक भएका ती मृगहरूलाई सम्पूर्ण प्राणीमाथि दया गर्ने तीन आँखा भएका स्थावरात्मा आदिमृग आशुतोष भगवान् महेश्वरले मृगको रूप लिएर सभामा हँसिलो अनुहार लगाउँदै भन्न लाग्नुभयो ॥१११–११२॥

आदिमृगले भन्नुभयो – हे उत्तम मृगहरू हो ! प्राणधारी व्यक्तिहरूका निमित्त संसार भनेको यस्तै हो। यो जन्म र मृत्युसँग गाँसिएको छ र यो संसार गहिरो पानीजस्तै छ। ठूलो गहिरो कुवाजस्तै अँध्यारो संसाररूपी जङ्गलमा विषयरूपी गोहीद्वारा रोकिएका र विवेकहीन बुद्धि भएका प्राणीहरू सुखप्राप्तिका चाहनाले नानाथरी खेल खेलिरहेका छन्। उनीहरूलाई विषयरूपी ग्राहले डसेको हुन्छ। विवेकशून्य बुद्धि भएका ती मृग अर्थात् पशु हुन्। अर्काको मासु खाने कोही हुन्छन्, कोही अर्काको सम्पत्ति लुट्ने हुन्छन्। यस्ता प्राणीहरू र अर्कालाई पीडा गर्ने तथा मार्नेहरू स्वयं पनि जन्मको अन्त्यमा अरूबाट मारिन्छन्। त्यसपछि रौंको सङ्ख्या बराबरका अनन्त पापका कारण बँदेल आदि जुनीमा जन्म लिएर तिनीहरूले तिमीहरूजस्तै भई अबोध पशुयोनिमा निरन्तर घुम्नुपर्छ ॥११३–११६॥

---

५५. हास्यानि च शरीराणि, इति न.सं.पु.पाठः।

५६. हास्यविग्रहमालोक्य ह्यमूनि नो विभो ध्रुवम्, इति न.सं.पु.पाठः।

५७. देहास्त्यजन्ति पुरुष वद, इति न.सं.पु.पाठः।

५८. लक्षाण्ब्वतुरशीनां योन्युद्भूता वयं विभो, इति न.सं.पु.पाठः।

५९. अनुभुक्तामहे कष्टान्, इति न.सं.पु.पाठः।

६०. नेत्राण्यञ्जयतां नो वै, इति न.सं.पु.पाठः।

६१. आसुभृताम्, इति न.सं.पु.पाठः।

६२. अस्मिन् संसारकूपारे, इति न.सं.पु.पाठः।

६३. विवेकमतयः, इति न.सं.पु.पाठः।

६४. परमांसानि च केचित्परार्थग्रहणोत्सुकाः, इति न.सं.पु.पाठः।

६५. तादृशान् तान् वै पीड्यन्ते घ्नन्तियेऽपरान्, इति न.सं.पु.पाठः।

६६. तदघौलोर्लोमसंख्यातैः कोलाः प्रादुर्भवा इह, इति न.सं.पु.पाठः।

स्पर्शनात्तीर्थलिङ्गानां भाग्यपुण्यक्रमाच्चिरात्। सत्कुले भवने जन्म भवेन्नरसुदुर्लभम् ॥११७॥
लब्ध्वापि नरदेहं यः पशुपेशं न पश्यति। मनुष्ययोनितो नूनं मृगरूपः पशुर्वरम्[६७] ॥११८॥
चतुर्विधानि भूतानि सन्ति सप्तस्थिरासु च। स्वकर्मवशगास्तेषु तेषां श्रेष्ठा सदाऽत्रजाः ॥११९॥
अप्यत्र सम्भवो जन्तुर्यदि ज्ञानैर्विवर्जितः। स न प्राप्नोति निर्वाणं नर एव पुनः पुनः ॥१२०॥
संस्नातो वाग्वतीतोये पशुपतिं[६८] प्रपश्यति। मम योनिजलं पीत्वा स निर्वाणं समाप्नुयात्[६९] ॥१२१॥
एकतः सर्वतीर्थानि चैकतो वाग्वतीजलम्। तुलितं धर्मदण्डेन ब्रह्मणा विष्णुना तथा[७०] ॥१२२॥
तेषां शतगुणं धन्यं वाग्वतीसलिलं गुरु। तस्मादपि यवाधिक्यान् मद्योनिजं सुदुर्लभम् ॥१२३॥

चित्रलोमोवाच

यद्येवं भवता प्रोक्तमस्मज्जननतारिणी। विभो ! कुत्र भवद्योनिः प्रतिष्ठतीप्सितप्रदा ॥१२४॥
कथञ्च स्नायतेऽस्माभिस्तृणाशनैर्जलोत्तमे। पितृलोकैः समं जन्यः प्राप्नुयामः[७१] कथं पुनः ॥१२५॥

आदिमृग उवाच

ज्ञानरसा तटे पूर्वे मम योनिः परात्परम्। अतः पूर्वादृषेस्तीर्थात्त्रिभिस्तीर्थैः समं बभौ ॥१२६॥
आदिशक्तेः प्रभावाच्च पूर्वप्राच्यान्तरेऽनिशम्[७२]। कलुषाणां कदाप्यत्र प्रवेशो हि न विद्यते ॥१२७॥
ध्रुवं चत्वारि तीर्थानि न मुञ्चन्ति सुरर्षयः[७३]। अक्षयं फलमश्नन्ति तत्र पुण्यकृतो नराः[७४] ॥१२८॥

---

धेरै समयपछि तीर्थका लिङ्गको दर्शन र स्पर्शन गर्नाले भाग्य र पुण्यका क्रमले सामान्य मानिसका लागि दुर्लभ सत्कुलमा प्राणीको जन्म हुन्छ। मनुष्ययोनि पाएर पनि पशुपतिको दर्शन नगर्नेहरूले त मनुष्ययोनिमा उत्पन्न हुनुभन्दा पशुयोनिमा जन्मनु नै राम्रो हुन्छ। सातखण्ड भएको यस पृथ्वीमा चार किसिमका प्राणीहरू हुन्छन्। तिनीहरू आ–आफ्ना कर्मका अधीन हुन्छन्। तीमध्ये यस भूमिमा जन्मने सबैभन्दा उत्तम हुन्छन् ॥११७–११९॥

कुनै प्राणी यहाँ जन्मिएर पनि यदि ज्ञानी हुँदैन भने त्यसले मुक्ति पाउन सक्दैन। उल्टै बारम्बार मनुष्ययोनिमा घुमिरहनुपर्छ। वाग्वतीको जलमा स्नान गरेर जसले पशुपतिको दर्शन गर्छ पशुयोनितीर्थको जल पान गर्छ त्यो व्यक्ति तुरुन्तै मुक्त हुन्छ। एकातिर सबै तीर्थहरू र अर्कातिर वाग्वतीको जललाई राखेर ब्रह्मा र विष्णुले धर्मदण्ड भएको तुलाले जोखेका थिए। ती तीर्थहरूभन्दा पनि वाग्वती नदीको जल सय गुणा बढी भएको ठहर भयो। त्यसमा पनि पशुयोनितीर्थको जल एक जौ बराबर बढी देखिएको हुँदा अत्यन्त दुर्लभ छ ॥१२०–१२३॥

चित्रलोमाले भन्यो – यदि यसो हो भने हाम्रो जन्मलाई तार्ने र इच्छा लागेको कामना पूर्ण गर्ने हजुरको योनि अर्थात् पशुयोनितीर्थ कहाँ छ ? घाँस खाएर जीविका गर्ने हामीले त्यहाँको जलमा कसरी स्नान गर्ने ? साथै पितृहरूसँगै बस्ने गरी कसरी जन्म पाउने ? ॥१२४–१२५॥

आदिमृगले भन्नुभयो – वाग्वती नदीको पूर्वतटमा ज्ञानानन्दमय जलले परिपूर्ण ब्रह्ममय पशुयोनितीर्थ रहेको छ। यहाँदेखि पूर्वतर्फ रहेको ऋषितीर्थबाट पनि केही पूर्वतर्फ तीनवटा तीर्थले घेरिएर पशुयोनितीर्थ सुहाएको छ। आदिशक्तिको प्रभावले पूर्व र पश्चिमका मध्यभागमा कहिल्यै पनि पापीहरूको त्यहाँ प्रवेश हुन सक्दैन। देवता र ऋषिहरूले यी चारै तीर्थलाई छोड्दैनन्। मनुष्यहरूले त्यस तीर्थमा गरेको शुभाशुभ कर्मको फल निश्चय नै अक्षयरूपमा भोग गर्न पाउँछन् ॥१२६–१२८॥

---

६७. मद्योनिजिवनाप्लाव्य उद्भवः पशुर्वरम्, इति न.सं.पु.पाठः।
६८. अस्मत्पतिम्, इति न.सं.पु.पाठः।
६९. क्षणाल्लभेत्, इति न.सं.पु.पाठः।
७०. ब्रह्मविष्णुतुलाभ्याञ्च धर्मदण्डेन तुलितम्, इति न.सं.पु.पाठः।
७१. लभिष्यामि, इति न.सं.पु.पाठः।
७२. प्रतीच्या ह्यतः प्राच्याभ्यन्तरेनिशम्, इति न.सं.पु.पाठः।
७३. देवर्षयो न मुञ्चन्ति तीर्थानि चत्वारि ध्रुवम्, इति न.सं.पु.पाठः।
७४. कृताकृतानि मर्त्यानां तत्राक्षयं समश्नुते , इति न.सं.पु.पाठः।

प्रक्षाल्य पाणिपादास्यं दन्तधावनपूर्वकम्। दर्भधृग् ब्रह्मतीर्थेन चाचमनं त्रिधा पुनः ॥१२९॥
अर्ककुण्डतटं गत्वा सङ्कल्प्य च कुशोदकैः। एतत्तीर्थादितुर्येषु करिष्येऽहं जलाप्लवम् ॥१३०॥
ततः संस्नाति य[७५]स्तेषु भक्त्येप्सितं स्मरन् हृदा। एवं स्नानं मनुष्याणां सर्वतीर्थेषु चोदितम् ॥१३१॥
प्रातर्गत्वा निराहारस्तीर्थान्तिकं हि तज्जलम्। अजस्रञ्च सुखं पानं पशूनां स्नानमीरितम् ॥१३२॥

चारुलोमोवाच

को मुक्तस्तत्र धीरार्य मानवो वा पशुस्तथा। कस्मात्प्रलभ्यते धर्मफलमसुभृतैर्नरैः ॥१३३॥

आदिमृग उवाच

तपोयज्ञव्रतैश्चैव[७६] नोपवासार्चनैस्तथा। लभ्यते स्नानतो मर्त्यैर्यथाकृतानुसारतः ॥१३४॥
दानैः प्रलभ्यते लक्ष्मीरदानैः सा दरिद्रता[७७]। पापैर्नरकसद्मानि परदुःखैश्च यातना ॥१३५॥
दारिद्रयाद् वितथः प्रोक्तस्तस्मादपि च पातकम्[७८]। अशौचाद्वृजिनौघात्मा चाजन्मावधि नारकी ॥१३६॥
रतिजो विद्यते धर्मः पापञ्चैवाचलोपमम्। दहति कल्मषं सर्वं रतिकाग्निर्यथा वनम् ॥१३७॥
शृणु कश्चित्पुरा मुक्तो व्याघ्रस्तत्र भयङ्करः। सिद्धारण्ये सदावासी वन्यान् हत्वाऽसुधारकः[७९] ॥१३८॥
सहस्रं मृगवर्गाश्च शूकराश्च चतुःशतम्। नृवर्गो विंशतिसङ्ख्यो गर्जमानेन वै हताः ॥१३९॥
तत्पापैर्लिप्तदेहोऽसौ चातिवृद्धो बभूव हि। हन्तुं न शक्तवान्यङ्कून् स्थगितगमनः क्रमात् ॥१४०॥

---

त्यस तीर्थमा गएर हात-पाउ पखाली दन्तमञ्जन गरेर शुद्ध भएर कुश समात्नुपर्छ र ब्रह्मतीर्थले तीनपटक आचमन गर्नुपर्छ। अर्ककुण्डको तीरमा गएर कुश, जल हातमा लिएर यी चारैवटा तीर्थमा म स्नान गर्छु भनी सङ्कल्प गर्नुपर्छ। त्यसपछि भक्तिसाथ मनले चिताएको कुरा सम्झदै स्नान गर्नुपर्छ। यसो गर्दा सबै तीर्थहरू एकै ठाउँमा जम्मा हुन्छन्। बिहान निराहार भएर तीर्थको नजिकै गएर त्यहाँको जल सधैं आनन्दसित पान गर्नु नै पशुहरूको स्नान हो ॥१२९-१३२॥

चारुलोमाले भन्यो – हे आर्य ! त्यस ठाउँमा को मुक्त भयो ? मनुष्य अथवा पशु, त्यो जलपान गर्नाले जुन धर्म हुन्छ, त्यो फल प्राणधारी मनुष्यले कसरी पाउन सक्छन् ? ॥१३३॥

आदिमृगले भन्नुभयो – त्यस किसिमको पुण्य मनुष्यले तपस्या, यज्ञ, उपवास, व्रत, पूजापाठ आदि कर्मद्वारा पाउन सक्दैनन्, त्यहाँ स्नान गर्दा स्नान अनुसारको त्यो पुण्य सजिलै पाउँछन्। दानबाट लक्ष्मी प्राप्त हुन्छ, दान गरेन भने दरिद्री हुन्छ, पाप गऱ्यो भने नरकमा वास हुन्छ, अर्कालाई दुःख दियो भने तीव्र पीडाको भोग गर्नुपर्छ। गरीबीबाट असत्य पैदा हुन्छ। त्यसबाट पाप पैदा हुन्छ। पापकै कारण कुनै किसिमको शुद्धि हुँदैन। अशुद्धि भएपछि मानिसको आत्मा पापका पुञ्जले भरिन्छ। त्यस्तो पापीले नरकका यातना भोग्नुपर्दछ र अर्को जन्म नपाउँदासम्म उसले नरकमै वास गर्नुपर्दछ। विधिपूर्वक गरिने रतिमा धर्म पनि छ, विधि नपुऱ्याउँदा पहाडजस्तै अचल पाप पनि छ। भक्तिपूर्ण धर्मले सारा पापलाई नष्ट गर्छ। त्यसले अग्निले वनलाई जस्तै गरी पापलाई डढाइ पनि दिन्छ ॥१३४-१३७॥

हे मृग ! सुन, अघि सिद्धमुनिहरूको तपोभूमिमा बस्ने र वनका प्राणीहरूलाई मारेर जीवन निर्वाह गर्ने अत्यन्त डरलाग्दो कुनै बाघ यसै ठाउँबाट मुक्त भएको थियो। त्यसले हजारौं मृग, चार सय बँदेल, बीसवटा मान्छेलाई गर्जना गरेर मारेको थियो। हत्याको पपाले लिप्त भएको त्यो बाघ एकदिन अत्यन्तै बूढो भयो र मृगहरूलाई मार्न असमर्थ भयो। ऊ क्रमैले हिँड्न पनि नसक्ने भयो ॥१३८-१४०॥

---

७५. संस्नायते, इति न.सं.पु.पाठः।
७६. तपोयज्ञायप्लवैः कर्म, इति न.सं.पु.पाठः।
७७. लक्ष्मीस्तददानैर्दरिद्रता, इति न.सं.पु.पाठः।
७८. दारियद्वितद्रथः प्रोक्तस्तस्मादपि च पातकः, इति न.सं.पु.पाठः।
७९. वनेचराय जीवनः, इति न.सं.पु.पाठः।

मम योन्या विदूरेऽसौ चावात्सीद् भयकृच्चिरम्। चर्तुषु खलु तीर्थेषु प्राश्यापो भक्षयन् मृगान् ॥१४१॥

मार्गकृष्णचतुर्दश्यां मदुद्भवतिथौ मृगाः। तृषार्तोऽप्यपिबत् तोयं मम योन्यामसौ सकृत् ॥१४२॥

कियत्कालावसाने तं मृगयायां चरन्नरः। जघान पत्रिणा धन्वी ततश्च गतपौरुषः ॥१४३॥

सोऽपीयेष नरं हन्तुं प्राणैः कण्ठगतैर्हदा। मेषस्थे तरणौ प्राणानजहाद्रविवासरे ॥१४४॥

गर्जमानोऽपि जन्मान्ते नरदेहमवाप हि। मृगयासञ्चरोऽजस्रं चास्मिन्वने धनुर्द्धरः ॥१४५॥

पीतं न योनिकं तेन धन्वी तस्मादसौ नरः। तद्विग्रहं परित्यज्य दधार मृगविग्रहम् ॥१४६॥

पिबन्तं मम योन्याञ्च जलं मृगं धनुर्द्धरः। उत्ससार शरं हन्तुमाकर्णपूरितं तदा ॥१४७॥

मृगोऽपि तादृशं प्रेक्ष्य चात्ममृत्युं विदूरतः। पीतापो ज्ञानवान् भूत्वा व्याचष्ट वचनं भयात् ॥१४८॥

मृग उवाच

प्रहारं मां विधेहि त्वं[८०] पत्रिणा शृणु मद्वचः। क्षणभङ्गुरजीवोऽसि मम जीवोऽपि तादृशः ॥१४९॥

मन्मांसैस्तर्प्यते प्राणः स्वकीयो भवता यदि। अवश्यं त्यक्ष्यते प्राणो भवन्तं सुखतर्पणः ॥१५०॥

लुब्धक उवाच

भवतात्र हतः पूर्वमहं शरेण पीडितः[८१]। वैरान्तरं गमिष्यामि हत्वा तृप्यामि त्वां यथा[८२] ॥१५१॥

मृगेश उवाच

इत्युक्त्वा हरिणं म्लेच्छस्तत्कुक्षौ निचखान वै। सोऽपि शल्यव्यथो ह्यस्मै व्याजहर वचः पुनः ॥१५२॥

---

पशुयोनितीर्थको नजिकै रहेको जङ्गलमा जन्तुहरूमा त्रास पैदा गर्दै धेरै समयसम्म यो चारै तीर्थको पानी पिई मृगलाई खाएर बस्दथ्यो। मेरो जन्मतिथि मार्गकृष्ण चतुर्दशीका दिन तिर्खाएका अरू मृगहरूले जस्तै यसले पनि पशुयोनितीर्थमा आएर एकपटक पानी पियो। केही समयपछि शिकार खेल्न आएको व्याधाले त्यसलाई बाण हान्यो। त्यसपछि उसको शक्ति क्षीण भयो। त्यस बाघले पनि मानिसलाई मार्न घाँटीसम्म सास आउने गरी कोसिस गऱ्यो। अन्त्यमा मेषराशिमा सूर्य भएको महिना अर्थात् वैशाखको आइतबारका दिन त्यसले प्राण छोड्यो ॥१४१–१४४॥

सिंहको जुनी बिताएको भए पनि त्यसले अर्को जन्ममा मान्छेको जुनी पायो र धनुर्धारी भएर यही वनमा शिकार खेल्दै निरन्तर हिँड्न थाल्यो। मनुष्यजन्ममा पशुयोनितीर्थको जल नखाएको हुँदा त्यस धनुर्धारी मानिसले त्यो शरीर छोडेर मृगको शरीर धारण गऱ्यो। पशुयोनितीर्थमा आएर जल खान लागेको त्यस मृगलाई धनुर्धारी व्याधाले कानसम्म पुग्ने गरी धनुष तानेर बाण हान्यो। मृगले पनि टाढैबाट आफ्नो मृत्यु अब हुन्छ भन्ने कुरा सोचेर पशुयोनितीर्थको जल पिएर ज्ञानी भई डराउँदै भन्न लाग्यो ॥१४५–१४८॥

मृगले भन्यो – हे व्याधा। मलाई बाण नहान। कृपया मेरो कुरा सुन। तिम्रो जीवन पनि क्षणभङ्गुर छ, साथै मेरो पनि। यदि मेरो मासुले तिम्रो आत्मा तृप्त हुन्छ भने म अहिले नै प्राण छोड्छु ॥१४९–१५०॥

व्याधाले भन्यो – पूर्वजन्ममा मलाई पनि पहिले तैँले बाणले पीडा दिएर मारेको थिइस्, म मरेको थिएँ। त्यसैले तैँलाई मारेर म वैरशोधन गर्छु। त्यसबाट म तृप्त हुनेछु ॥१५१॥

आदिमृगले भन्नुभयो – यति भनेर त्यस व्याधाले मृगको कोखमा पर्ने गरी बाण हान्यो। मृग पनि बाणको व्यथाले पीडित हुँदै व्याधालाई भन्न लाग्यो ॥१५२॥

---

८०. मा प्रहारय मां तात, इति न.सं.पु.पाठः। ८१. पीडयन्, इति न.सं.पु.पाठः।
८२. त्वां तर्प्यते तथा, इति न.सं.पु.पाठः।

मृग उवाच

उड्डीशेशो नृपः पूर्वं राजसीबुद्धिसंश्रितः । मृगयामाचरन्नित्यं[८३] विप्रशापेन चेदृशः ॥१५३॥
मया च राजसीबुद्ध्या टङ्काश्रमे मृगो हतः । एतादृशं वपुर्लध्वमृषेरमर्षशापतः[८४] ॥१५४॥
त्वञ्च कान्तीश्वरस्तात किल्विषैस्तादृशं वपुः । तत्स्वापहरणान्यायैः प्रजाब्राह्मणपीडनात् ॥१५५॥
तस्माद्भवानभूद् व्याघ्रः सर्वजन्तुप्रहिंसकः । भवन्तं तादृशं हत्वा न पापैर्लिप्यते कदा ॥१५६॥

मृगेश उवाच

सन्त्यज्य तादृशं देहं दधार भूपविग्रहम् । पञ्चतीर्थेषु संसस्नौ विकिल्विषः स्मिताननः ॥१५७॥
मार्गकृष्णचतुर्दश्यां पूर्वाह्णे दर्शयँश्च तम् । विमानेनार्कवर्णेन परं धाम मुदा ययौ ॥१५८॥
तादृशं प्रेक्ष्य तं धन्वी चित्रात्मा स्थगिताकृतिः । तेषु स्नानाशनाभावात्तादृशीं स गतिं ययौ ॥१५९॥

स्कन्द उवाच

विनिवृत्तमृगा ये ते चागमंस्तेषु तद्ध्रदे । पपुर्जलं दधुस्ते च[८५] देहान्ते राजविग्रहम् ॥१६०॥
परिवारैः समायुक्तः पित्रादिभिर्नृपोत्तमः । भविष्ये[८६] चैव देहान्ते चित्रलोमाऽमृतं पपौ ॥१६१॥

---

मृगले भन्यो – अघि तिमी उड्डीस देशका राजा थियौ । रजोगुणबाट बुद्धि प्रभावित भएको हुँदा मृगको शिकार खेल्दै घुम्ने गर्थ्यौ । त्यसै अवसरमा भएको ब्राह्मणको सरापले गर्दा तिमी यस्ता भएका हौ । मैले पनि राजसी बुद्धिका प्रभावले गर्दा टङ्काश्रममा मृगलाई मारेको थिएँ । रिसाएर ऋषिको शापले गर्दा मैले यो शरीर पाएको थिएँ । हे व्याधा ! तपाईं त पहिले कान्तिको पुञ्ज नै हुनुहुन्थ्यो । अर्काको सम्पत्तिको हरणबाट भएको अन्याय, ब्राह्मणहरूलाई दिएको पीडाजस्ता अनेकौं पापले गर्दा तपाईंले यो शरीर लिनुभएको हो । त्यसैले तपाईं सबै प्राणीहरूलाई हिंसा गर्ने बाघ हुनुभयो । तपाईंलाई मारेर कहिल्यै पनि पाप लाग्दैन ॥१५३-१५६॥

मृगेश्वरले भन्नुभयो – त्यसपछि मृगको चोला छाडेर त्यसले राजाको शरीर लियो । पाँचै तीर्थमा स्नान गऱ्यो र पापबाट मुक्त भएर हँसिलो बन्यो । मार्ग कृष्ण चतुर्दशीको पूर्वाह्नमा त्यो व्याधालाई देखाउँदै सूर्यको जस्तो तेजिलो विमानमा चढेर हँसिलो अनुहार लगाएर मृग परमधाम गयो । त्यो देखेर धनुर्धारी व्याधा छक्क पऱ्यो । त्यो तीर्थमा स्नान र जलपान नगरेको हुँदा त्यो व्याधा त्यस्तो गतिमा पुगेको थियो ॥१५७-१५९॥

कार्तिक स्वामीले भन्नुभयो – तिनीहरूको बीचमा फर्किएका मृगहरूले पनि त्यसै दहमा गएर इच्छानुसार जलपान गरे । त्यो जलको प्रभावले गर्दा उनीहरूले राजाको शरीर लिए । अन्त्यमा परिवार तथा पितृहरूका साथ देहान्तमा राजाको शरीर लिन सक्छु भन्ने ठानेर चित्रलोमाले पनि त्यस कुण्डको जल पान गऱ्यो ॥१६०-१६१॥

---

८३. चरन्तो मृगयाऽजस्रम्, इति न.सं.पु.पाठः ।
८४. एतादृशं वपुर्लब्धमृषेरामर्षशापतः, इति न.सं.पु.पाठः ।
८५. समाधाय, इति न.सं.पु.पाठः ।
८६. भविष्याणि, इति न.सं.पु.पाठः ।

अभूत्पुत्रैः समं राजा देहान्ते च सुदर्शनः। सहस्राब्दं महीं भुक्त्वा ततो रुक्षो व्यजायत ॥१६२॥
भूयो धर्मैः स्वपुत्राणां धर्मदत्तोऽभवत्पुरा। चित्रलोमादिभिः पुत्रैर्धर्मकेत्वभिधानकैः ॥१६३॥
शृणोति धीरः पशुयोनिसम्भवं विमुच्य तज्जं दृढपाशकिल्विषम्[८७]।
प्रयाति धामैश्वरशाश्वतं परं सुखञ्च भुक्त्वा नृपभोग्यदुर्लभम् ॥१६४॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे पशुयोनिमाहात्म्ये मृगोपाख्यानं नाम सप्तषष्ट्युत्तरशततमोऽध्यायः ॥१६७॥

---

मरेपछि त्यो चित्रलोमा पुत्रहरूका साथ सुदर्शन राजा भएर जन्मियो। हजार वर्षसम्म पृथ्वीको भोग गरेपछि त्यो अत्यन्तै रोगी भयो। चित्रलोमा आदि गरिएका पुत्रहरूका साथै आफ्ना पुत्र आदिका धर्मले सुदर्शन फेरि त्यो धर्मदत्त भएर जन्मियो ॥१६२-१६३॥

यो पशुयोनिको जन्म र मरणसँग सम्बद्ध कथालाई जसले दत्तचित्त भएर सुन्छ, त्यसले सम्पूर्ण पापरूपी पाशो र मायारूपी बन्धलाई काटेर राजाले पनि प्राप्त गर्न नसक्ने सुखभोग प्राप्त गरी अविनाशी ईश्वरको परमधाममा जान्छ ॥१६४॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्ड पशुयोनिमाहात्म्यमा मृगको उपाख्याननामक
एकसय सत्सट्ठिऔं अध्याय पूरा भयो।

---

८७. तत्पाशसुबन्धकिल्विषम्, इति न.सं.पु.पाठः।

# अष्टषष्ट्यधिकशततमोऽध्यायः

वज्रनाभाय वरप्रदानम्

ऋषय ऊचुः

अत्यद्भुताः कथाः तात ! श्रुता मनःसुखप्रदाः । श्रीमतां हि प्रसादाद्वै चास्माभिर्ज्ञानदायिकाः ॥१॥

ह्रदीभूतं कथं तात तत्क्षेत्रं वद नः पुरा । भविष्यं श्रावितं तेन रुद्रेणेभ्योऽब्रवीद् भवान् ॥२॥

सूत उवाच

अपृच्छदार्यासुतमार्द्रयन्मुहुः स कुम्भयोनिः खलु तद्धि कारणम् ।

नदीह्रदीभूतजलान्तराविलं मुनीश ! सर्वं शृणुयाच्छ्रुवञ्च तत् ॥३॥

अगस्त्य उवाच

भूयोऽहं श्रोतुमिच्छामि ह्रदीभूता च वाग्वती । यस्माद्धेतोर्महासेन ! नदीभूता कथं हि सा ॥४॥

स्कन्द उवाच

आसन् दैत्याः पुरा वीरा बाणस्य भ्रातरस्त्रयः । वज्रनाभो विराधश्च शङ्खासुरस्तथापरः ॥५॥

वज्रं लग्नमभून्नाभौ पुरा दैत्यस्य संयुगे । पुरुहूतरुषा मुक्तं वज्रनाभस्ततः श्रुतः ॥६॥

ब्रह्मणो वरदर्पेण स्वर्गे दैत्येन वै रुषा । तेनैव दमितः शक्रः स इन्द्रदमनः श्रुतः ॥७॥

तञ्चन्दनभराल्लब्धं लिङ्गाच्छङ्खेन वै वरम् । गोलोकेशाद्विराधेन सहस्राब्दतपोबलात् ॥८॥

शङ्खमूले वरं लब्धं शक्रतापेन पूर्वतः । लब्धवराः सुखं दैत्या बुभुजिरे हि तत्परे ॥९॥

आसीच्च भगिनी तेषां देवी प्रभावती श्रुता । रूपलक्षणसम्पूर्णा प्राणेभ्योऽपि गरीयसी ॥१०॥

---

अध्याय - १६८

वज्रनाभलाई वर प्रदान

ऋषिहरूले भने - हे सूतजी ! हामीहरूले तपाईंको कृपाले गर्दा ज्ञानदायक आफ्नो मनलाई सन्तोष दिने आश्चर्यजनक कथाहरू सुन्यौं। अब अगाडि सुन्ने इच्छा छ। अघि त्यो क्षेत्र कसरी अगाध जलले युक्त भएको थियो ? त्यो सबै हामीलाई बताउनुहोस्। भगवान् शङ्करले देवताहरूलाई भविष्य सुनाउनुभएको थियो भनेर हजुरले भन्नुभयो, त्यो पनि बताउनुहोस् ॥१-२॥

सूतजीले भन्नुभयो - हे आर्य ! तिमीहरूले मलाई बारम्बार यो कुरा सोधेका थियौ, त्यसको कारण अगाध जलयुक्त भएको नदीभित्र केही क्लेश र प्रदूषण भएको वृत्तान्त बताउनुहोस्। हे कार्तिक स्वामी ! दहका रूपमा रहेकी वाग्वती कसरी नदीका रूपमा परिणत भइन्, त्यसको कारण म फेरि सुन्न चाहन्छु ॥३-४॥

कार्तिक स्वामीले भन्नुभयो - अघि बाणासुरका तीन भाइ वीर छोरा थिए - वज्रनाथ, विराध र शङ्खासुर। अघि देवता र दैत्यको युद्धमा इन्द्रको रीसले छुटेको वज्र नाभिमा लागेको थियो। त्यसैले उसको नाम वज्रनाभ भयो। ब्रह्माबाट पाएको वरको अभिमानले गर्दा स्वर्गमा गएर दैत्यले रीसले इन्द्रलाई दमन गरेको थियो। त्यसैले त्यसको नाम इन्द्रदमन रह्यो। चन्दनभराटेश्वर नामक शिवलिङ्गको आराधनाबाट शङ्खासुरले वर पायो। यसरी नै विराधले पनि हजार वर्षसम्म तपस्या गरेर गोलोकेश्वरबाट वर प्राप्त गरेको थियो। इन्द्रको तापले धक्का खाएको दैत्यले शङ्खमूलमा आएर वर प्राप्त गऱ्यो। वर प्राप्त गरेपछि सुखपूर्वक दैत्यहरूले इन्द्रपुरीको भोग गरे। ती दैत्यहरूकी प्रभावती नाम गरेकी बहिनी थिई। प्रभावती रूप र लक्षणले पूर्ण भएकी र तिनका लागि प्राणभन्दा पनि प्यारी थिई ॥५-१०॥

सखीभिरसकृत्सा हि वरार्थं प्रतिबोधिता। पतिं न काङ्क्षते सा च दैत्यदानवयोः कुले ॥११॥
अनिच्छन्तीं सुविज्ञाय[1] भगिनीं दैत्यसत्तमाः। न ददुः प्रार्थ्यमानां तां कस्मैचिदपि जन्मिने ॥१२॥
उद्यानानि विचित्राणि चन्दनाचलमूर्द्धनि। प्रीत्यर्थं कारयामासुर्भगिन्यै दैत्यसत्तमाः ॥१३॥
शक्रतापप्रतापेन रक्षिता वरसुन्दरी। न शक्यते बलान्नेतुं कैश्चिदप्यमरादिभिः ॥१४॥
सा निर्भयञ्चचारार्या राजपुत्री प्रभावती। तपोयोगरता नित्यं रूपातिशयशालिनी ॥१५॥
तीरमारभ्य गण्डक्या यावत्तद्वाग्वतीतटम्। पूर्वं पश्चाश्च तस्याद्रेरधस्ताच्चन्दनाचलात्[2] ॥१६॥
सुप्रभा नाम विख्याता पुरी स्वर्गपुरोपमा। तस्यान्ते हि विराजन्ते भ्रातृभिः सह दानवाः ॥१७॥
बिम्बोष्ठ्याः गर्भसञ्जाते मातुर्वज्रे त्रिविष्टपे। शक्रदक्षिणचक्षुश्च शश्वद्धि स्पन्दते भृशम् ॥१८॥
ततो बृहस्पतिं शक्रः समाहूयादिदेश च। परीक्षणाय तद्धेतुञ्चक्षुःकम्पस्य कुम्भज ॥१९॥
स्पन्दते चक्षुषश्चोर्ध्वं दक्षिणस्य गुरो मम। भवान् परीक्षतां तन्मे ततो ब्रूहि शुभाशुभम् ॥२०॥
इत्याकर्ण्य वचो जीवः शक्रेणोक्तं भयान्मुहुः। गुरुः परीक्षयामास तस्मिन् शुभाशुभं मुने ॥२१॥
सम्परीक्ष्य ततो जीवस्तस्य हेतुं घटोद्भव। व्याजहार वचस्तस्मै तमाश्वास्याशु सर्ववित् ॥२२॥

---

सखीहरूले बारम्बार उक्त वरका साथ विवाह गर्नका लागि प्रेरित गरिएकी ती प्रभावती दैत्य र दानवको कुलमा कसैलाई पनि वरण गर्न चाहन्नथिन्। यसरी दानवभन्दा अर्को कुलको पतिको चाहना राख्ने भएकी आफ्नी बहिनीको नजिकै गएर दैत्यहरूले सबै कुरा बुझेपछि माग्न आउने कुनै दानवलाई पनि उनीहरूले बहिनी दिएनन्। चन्दनाचलको शिखरमा दैत्यहरूले बहिनीलाई खुसी तुल्याउन विचित्र किसिमका फूलहरू र वनस्पतियुक्त बगैंचाहरू तयार गरेका थिए ॥११-१३॥

इन्द्रदमननामक राक्षसको प्रतापले गर्दा ती सुन्दरीलाई कुनै देवता दानव आदिले पनि बलपूर्वक अपहरण गर्न सकेका थिएनन्। उनी सुरक्षित थिइन्। रूपमा अत्यन्त सुन्दर भएकी ती राजपुत्री प्रभावती तपस्यामा तत्पर भएर निर्भयसित विचरण गर्थिन्। गण्डकीको तीरदेखि लिएर वाग्वतीको तीरसम्म पूर्व-पश्चिम फैलिएको चन्दनाचल पर्वत छ। त्यसको तल्लो भागमा सुप्रभा नाम गरेको स्वर्गजस्तै एउटा शहर थियो। त्यसको नजिकै भाइहरूका साथ दानवहरू बस्थे ॥१६-१७॥

हे अगस्त्य मुनि! आमा बिम्बोष्ठीको गर्भबाट वज्रनामक असुर जन्मिएपछि स्वर्गमा रहेका इन्द्रको दायाँ आँखा तुरुन्त खूबसित फर्फरायो। त्यसपछि इन्द्रले बृहस्पतिलाई बोलाएर आँखा फर्फराउनाको कारण परीक्षण गर्न लगाए। मेरा दायाँ आँखाको माथिल्लो भागमा स्फुरण भइरहेको छ। तपाईंले परीक्षा गर्नुपर्यो र मलाई राम्रो नराम्रो फल बताइदिनुपर्यो। इन्द्रले डराउँदै भनेको उक्त भनाइ सुनेपछि बृहस्पतिले त्यसमा रहेको शुभ, अशुभको परीक्षण गरे। सम्पूर्ण विषयका ज्ञाता बृहस्पतिले इन्द्रलाई आश्वासन दिँदै आँखा स्फुरण हुनुको कारण परीक्षा गरेर तुरुन्तै भन्न लागे ॥१८-२२॥

---

१. समुत्पत्य, इति न.सं.पु.पाठः। २. चन्दनागिरेः, इति न.सं.पु.पाठः।

बृहस्पतिरुवाच

अजायत बलेः पुत्रो हिमवद्गह्वरोत्तमे। सुप्रभानगरे शक्र ! बिम्बोष्ठ्याश्चात्मजो बली ॥२३॥

कालाल्लब्धवरो भूत्वा दैत्योऽसौ त्वां दमिष्यति। शक्राधुना ततो हेतोः स्वचक्षुः स्पन्दते भृशम् ॥२४॥

जातमात्रस्य दैत्यस्य चाभिधानं महर्षयः। शुभाशुभं परीक्ष्याशु प्रचक्रुः खलु संसदि ॥२५॥

असौ बालो गुणोपेत इन्द्रस्य दमनं खलु। तुमुलेऽपि च सङ्ग्रामे सद्यो नूनं करिष्यति ॥२६॥

इन्द्रदमन इत्याख्यं तस्मादस्याभिधानकम्। रूढं लोकेषु तेनैव नाम्ना[३] ख्यातिं गमिष्यति ॥२७॥

इत्युक्त्वा प्रययुः शक्रं स्वं स्वं गेहं महर्षयः। उपदिश्य च देवेन्द्र[४] सावधानपरो भव ॥२८॥

स्कन्द उवाच

निववृते तदा जीव इत्युक्त्वा खलु वज्रिणम्। शक्रोऽपि तत्परोऽभूच्च तच्छिद्रान्वेषणे मुने ॥२९॥

ततश्च षोडशाब्दान्ते वज्रोऽपृच्छद्धि भार्गवम्। उपदेशं प्रणम्याशु स्वाभिधानस्य कारणम् ॥३०॥

वज्र उवाच

वीर्येण वयसा न्यूनो भवाम्यहं गुरोऽधुना। किमर्थमजिते शक्रे मम नाम तथाविधम् ॥३१॥

कृतं महर्षिभिश्चेति लज्जया व्यथितेन्द्रियः। भविष्यति च मे नाम विडम्बनं न संशयः ॥३२॥

स्कन्द उवाच

भार्गवोऽपि ततोऽगस्त्य ! ज्वलितः स्वेन तेजसा। तस्य गुरुतरं वाक्यं श्रुत्वा हृष्टो भृशं तदा ॥३३॥

व्याचष्ट वचनं सद्यो दैत्याय भार्गवः पुनः। शक्रजयेप्सयाऽगस्त्य ! समप्रैषद्[५] हि तं मुदा ॥३४॥

---

बृहस्पतिले भने – हे इन्द्र ! हिमालयको उत्तम गुफामा रहेको सुप्रभा नगरमा बिम्बोष्ठीबाट बाणासुरको बलवान् छोरो जन्मियो। कालान्तरमा यसले वर पाएर तिमीलाई दमन गर्नेछ। हे इन्द्र ! यसैले अहिलेदेखि नै तिम्रो आँखा फर्फराउन थालेको हो ॥२३–२४॥

ऊ जन्मनेबित्तिकै ऋषिहरूले सभामा शुभ तथा अशुभको परीक्षा गरेर दैत्यको नाम राखे। गुणले युक्त भएको यस बालकले भीषण सङ्ग्राममा इन्द्रलाई सजिलैसित दमन गर्नेछ॥ त्यसैले गर्दा यसको इन्द्रदमन नाम रहेको हो। यो नाम रूढ भएर संसारमा प्रसिद्ध हुनेछ। यति भनेर त्यसको नाम राखी सबै ऋषिहरू 'हे देवराज तपाईं सावधान हुनुहोस्' भनेर आ–आफ्ना घरतर्फ गए॥२५–२८॥

कार्तिक स्वामीले भन्नुभयो – इन्द्रलाई यति भनेर बृहस्पति फर्किए। हे अगस्त्य मुनि ! इन्द्र पनि त्यसको छिद्र खोज्न थाले। सोह्र वर्ष पुगेपछि वज्रले शुक्रलाई प्रणाम गरेर आफ्नो नाम वज्रनाभ रहनुको कारण सोध्यो ॥२९–३०॥

वज्रले भन्यो – हे गुरु ! म पराक्रम र उमेरमा ज्यादै कम छु। मैले इन्द्रलाई जितेको छैन। तैपनि मेरो नाम कसरी वज्र रह्यो ? महर्षिहरूले मेरो नाम यस्तो राखे भनेर मेरा इन्द्रियहरू लाजले व्यथित भएका छन्। मेरो नाम विडम्बनापूर्ण हुनेछ, यसमा शङ्का छैन ॥३१–३२॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! उसको गम्भीर वचन सुनेर आफ्नै तेजले धपक्क बले का गुरु शुक्राचार्य अत्यन्त प्रसन्न भए। उनले तुरुन्तै त्यस दैत्यलाई इन्द्रलाई जित्ने कामना राखेर युद्ध गर्न पठाउने निश्चय गरे ॥३३–३४॥

---

३. लोकेषु चेति रुढो वै ननु, इति न.सं.पु.पाठः।

४. कृत्वाभिधानकं तस्य, इति न.सं.पु.पाठः।

५. प्रस्थापितम्, इति न.सं.पु.पाठः।

गुरुरुवाच

रुद्रधारोदये तीर्थे क्रियतां नियमैस्तपः । शक्रस्य भङ्गकामेन स्वात्मनो हि जयेप्सया ॥३५॥
विभीषणेन पूर्वं वै यत्र लब्धो वरोत्तमः[६] । अद्यापि सुचिरञ्जीवी भवेद्रक्षो निरन्तरम् ॥३६॥
पञ्चरात्रमनुव्याप्य सहस्राणि प्रतप्यताम् । भक्त्याराधय धातारं स्नात्वा च वाग्वतीजले ॥३७॥
यं यं कामञ्च ते स्वान्ते विद्यते दैत्यसत्तम । तं तं दास्यति धाता वा वाग्वती तपसो बलात् ॥३८॥

स्कन्द उवाच

उपदेशं समादाय वज्रनाभो गुरोर्मुदा । तपःकर्तुं ययौ भक्त्या शङ्खमूले जयेप्सया ॥३९॥
स्नात्वा च वाग्वतीतोये रुद्रधारोदये शुभे । आराधयन् विधिं भक्त्या तन्मन्त्रं प्रजपन्मुहुः ॥४०॥
ततश्च पञ्चरात्रान्ते चाविर्भूतः पितामहः । विमानेनार्कवर्णेन वरं दातुं तपस्विने ॥४१॥
व्याजहार ततो ब्रह्मा तपस्विने शुभं वचः । तपसा तस्य सन्तुष्टः प्रहृष्टश्चतुराननः ॥४२॥

ब्रह्मोवाच

वरं वरय दैत्येन्द्र ! यत्ते मनसि विद्यते । तं तमपि ध्रुवं वत्स दास्यामि ते न संशयः ॥४३॥

वज्र उवाच

त्रैलोक्यविजयञ्चैव शक्रस्य दमनं पुनः । प्रदीयतामिति ब्रह्मन् ! यदि तुष्टोऽसि मे वरम् ॥४४॥

स्कन्द उवाच

मृत्युं न याचते दैत्यश्चाजेयस्त्वं सुरासुरैः[७] । सुखभोगञ्च यावद्धि धातारञ्च घटोद्भव ॥४५॥
दैत्येन्द्रवचनं श्रुत्वा भगवाँश्चतुराननः । प्रफुल्लनयनो भूत्वा चेदं वचनमब्रवीत् ॥४६॥

---

गुरुले भने – हे वज्रनाभ ! पहिले इन्द्रलाई हराएर म विजयी बनूँ भन्ने भावना लिएर नियमपूर्वक रुद्रधारोदय नाम गरेको तीर्थमा नियमपूर्वक तपस्या गर । जहाँ अघि विभीषणले उत्तम वर पाएका थिए, त्यही वरले गर्दा ती राक्षसराज आज पनि निरन्तर चिरञ्जीवी भएर रहेका छन् । पाँच रातसम्म एक हजार जप गर । वाग्वतीको जलमा स्नान गरेर ब्रह्माजीको भक्तिपूर्वक आराधना गर । हे दैत्य ! तिम्रो हृदयमा जे–जे कामनाहरू छन् वाग्वतीमा तपस्या गरेको बलले गर्दा ब्रह्माले ती–ती फलहरू दिनुहुनेछ ॥३५–३८॥

कार्तिक स्वामीले भन्नुभयो – आफ्ना गुरु शुक्राचार्यको उपदेश पाएपछि वज्रनाभ विजयको आकाङ्क्षा लिएर भक्तिपूर्वक तपस्या गर्नका लागि शङ्खमूलमा गयो । रुद्रधारोदय तीर्थको वाग्वतीको कल्याणकारी जलमा स्नान गरेर बारम्बार मन्त्र जप्दै विधिपूर्वक ब्रह्माको आराधना गऱ्यो । त्यसो गरेपछि पाँचौं रातको अन्त्यमा सूर्यको जस्तो तेज भएको विमानद्वारा त्यस दैत्यलाई वर दिन ब्रह्माजी प्रकट हुनुभयो । त्यसपछि त्यसको तपस्याले सन्तुष्ट र खुसी हुनुभएका ब्रह्माले तपस्वी त्यस दैत्यलाई कल्याणमय बोलीमा भन्नुभयो ॥३९–४२॥

ब्रह्माले भन्नुभयो – हे दैत्येन्द्र ! तिम्रो मनमा जे जे इच्छा छ, त्यो त्यो वर माग । हे बाबु ! म तिमीलाई त्यो त्यो वर अवश्य दिन्छु, यसमा शङ्का छैन ॥४३॥

वज्रनाभले भन्यो – यदि हजुर मदेखि सन्तुष्ट हुनुहुन्छ भने तीनै लोकमाथि विजय गरी इन्द्रलाई दमन गर्न सक्ने वर मलाई दिनुहोस् ॥४४॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! देवता र दानवले आफूलाई जित्न नसकून् भन्ने वर माग्ने वज्रनाभले सुखभोग र उत्तम मृत्युसँग सम्बद्ध अरू वर माग्न सकेन । दैत्यको कुरा सुनेर ब्रह्माले प्रसन्न हुँदै यो कुरा भन्नुभयो ॥४५–४६॥

---

६. लब्धं वरोत्तमम्, इति न.सं.पु.पाठः । ७. कालं न याचते दैत्य चाजयस्त्वं सुरासुरैः, इति न.सं.पु.पाठः ।

ब्रह्मोवाच

अजेयस्त्वं सुरैर्भूत्वा किन्तु स्वर्गनिवासिभिः। त्रैलोक्यविजयी चैव भविष्यसि महासुरः ॥४७॥

दमिष्यसि पुनः शक्रं तपसस्ते प्रभावतः। दुहितुस्तव हेतोश्च देवान्मृत्युर्भविष्यति ॥४८॥

स्कन्द उवाच

इत्युक्त्वान्तर्दधे ब्रह्मा तत्रैव च घटोद्भव। दैत्योऽपि प्रययौ राज्यं सुप्रभानामविश्रुतम् ॥४९॥

ततो लब्धवरो वज्रो राज्यञ्चकार वै सुखम्। कञ्चित्कालं निनायार्य भ्रातृभिः सह सन्ततम् ॥५०॥

वज्राख्योऽसौ विधिशुभमुखा[८]ल्लब्धचित्तेप्सितो वै
नाना सौख्यं खलु च बुभुजे सुप्रभायां बिभीतिः।
सन्तुष्टो न प्रवरवरभाक् क्वापि पुर्य्यामियेष।
स्वर्गं यातुं पुनरपि युधे सैष[९] दैत्यस्वभावः ॥५१॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये प्रद्युम्नोत्तरे वज्रनाभवरदानं नाम अष्टषट्यधिकशततमोऽध्यायः ॥१६८॥

---

ब्रह्माले भन्नुभयो – हे राक्षस ! तिमीलाई स्वर्गमा बस्ने देवताहरूले जित्न सक्दैनन्। तिमी तीनै लोकका विजयी बन्नेछौ। तिमीले गरेको तपस्याका प्रभावले तिमी इन्द्रलाई दमन गर्न समर्थ हुनेछौ। तिम्री छोरीका कारण देवताबाट तिम्रो मृत्यु हुनेछ ॥४७–४८॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! यति भनेर ब्रह्माजी अन्तर्धान हुनुभयो। दैत्य पनि सुप्रभा नाम गरेको राज्यमा गयो। त्यसपछि वर प्राप्त गरेर वज्र नाम गरेको दैत्यले आफ्ना भाइहरूका साथ निरन्तर राज्य गर्दै केही समय बितायो ॥४९–५०॥

त्यो वज्रनाभ दैत्यले ब्रह्माबाट आफूले इच्छा लागेको वर प्राप्त गऱ्यो र निडर भएर सुप्रभा नाम गरेको नगरमा विभिन्न सुखभोग गऱ्यो। परन्तु पृथ्वीभर आफूसँग लड्ने शत्रु नभएको हुँदा लड्न नपाएर लड्नका लागि स्वर्गमा गयो किनभने युद्ध गर्नु राक्षसको स्वभावै हो ॥५१॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्ड नेपालमाहात्म्यको प्रद्युम्नोत्तरमा वज्रनाभलाई ब्रह्माजीबाट वरप्रदाननामक एकसय अठ्सट्ठिऔँ अध्याय पूरा भयो।

---

८. चतुरवदनात्, इति न.सं.पु.पाठः।

९. गन्तुं पुनरयमपि स्याद्धि, इति न.सं.पु.पाठः।

# नवषष्ट्युत्तरशततमोऽध्यायः

इन्द्रदमनस्य दिग्विजयः

स्कन्द उवाच

ततो लब्धवरो वीरो दैत्यनायकचेष्टितः । परिवार्यासुरगणैरभिषिक्तो रराज वै ॥१॥

सामन्तैर्बहुभिःसार्द्धं मन्त्रिभिश्चानुयायिभिः । कूष्माण्डं प्रेषयामास दूतं देवेन्द्रसंसदि ॥२॥

गत्वा शक्रसभामध्ये सत्वरं सुरदूतकः । अब्रवीद्धि तदा वाक्यं कूष्माण्डो ह्यतिविक्रमः ॥३॥

कूष्माण्ड उवाच

दैत्येश्वरेण चात्राऽहं प्रेषितस्त्वयि कारणात् । न स्थातव्यं त्वयेन्द्रात्र यदि जीवितुमुत्सहे ? ॥४॥

प्रदत्तं ब्रह्मणा राज्यं मम भर्त्रे पुरन्दर । राज्यानि वीरभोग्यानि त्यक्तुमस्मात् त्वमर्हसि ॥५॥

स्कन्द उवाच

दूतस्य वचनं श्रुत्वा परुषं पाकशासनः । व्याचष्टं वचनं तस्मै प्ररोषाद्रक्तलोचनः ॥६॥

शक्र उवाच

अहो मूढतरा बुद्धिरीदृशी च यतोऽभवेत् । दैत्यस्य स्वल्पवीर्यस्य यतो ममावहेलना ॥७॥

न त्यज्यते मया राज्यं विना युद्धेन दूतक । राज्यानि वीरभोग्यानि स द्रष्टुमर्हति ध्रुवम् ॥८॥

स्कन्द उवाच

इत्युक्तं च सुरेन्द्रेण[1] सङ्ग्रामसूचकं वचः । कथयामास सम्प्राप्तो दूतो दैत्येन्द्रसंसदि ॥९॥

स्वदूतस्य वचः श्रुत्वा ज्वलत्कोपानलाकुलः । उद्योगं कारयामास सैन्यं युद्धाय दानवः ॥१०॥

---

अध्याय – १६९

इन्द्रदमनको दिग्विजय

कार्तिक स्वामीले भन्नुभयो – वर प्राप्त गरेको त्यो दैत्यको नायक राक्षसहरूद्वारा सेवित र अभिषिक्त भएर सुशोभित भयो । धेरै मन्त्री र भारदारहरूसँग सल्लाह गरेर त्यसले स्वर्गमा लडाईं गर्नका लागि कूष्माण्ड नाम गरेको दैत्यलाई त्यहाँ दूत बनाएर पठायो । अत्यन्त बलियो कूष्माण्ड तुरुन्त इन्द्रको सभामा देवताको दूत बनेर पुग्यो र इन्द्रलाई भन्यो ॥१–३॥

कूष्माण्डले भन्यो – कारणवश दैत्येश्वरले मलाई तपाईंसमक्ष पठाउनुभएको छ । हे इन्द्र ! यदि तपाईं बाँच्न चाहनुहुन्छ भने यहाँ नबस्नुहोस् । यो राज्य ब्रह्माले मेरा स्वामीलाई दिनुभएको छ । राज्य भनेको वीरले भोग गर्ने विषय हो । त्यसैले हामीलाई यो राज्य तपाईंले छोड्नुपर्छ ॥४–५॥

कार्तिक स्वामीले भन्नुभयो – त्यस दूतको कठोर भनाइ सुनेर रीसले राता आँखा बनाउँदै इन्द्रले भने ॥६॥

इन्द्रले भने – अहो बल नभएका दैत्यहरूमा मलाई पनि यत्रो अवहेलना गर्ने मूर्ख बुद्धि आयो ! हे दूत ! युद्ध नगरीकन म राज्य छोड्दिन, राज्य भनेको वीरहरूलेभोग गर्ने वस्तु हो । यो कुरा त्यसले देखोस् ॥७–८॥

कार्तिक स्वामीले भन्नुभयो – इन्द्रले भनेको युद्धसूचक कुरा सुनेर दूत दैत्यको सभामा आयो र उसले भएको वृत्तान्त बतायो । आफ्नो दूतको भनाइ सुनेर क्रुद्ध भएको त्यस दानवले सेनालाई युद्धका लागि तयारी गरायो ॥९–१०॥

---

१. इत्युक्तस्य सुरेन्द्रस्य, इति न.सं.पु.पाठः ।

वाद्यमवादयन् सेना नानास्वनाकुला भृशम्। ढक्कापटहकांस्यैश्च शङ्खडिण्डिमभेरिभिः ॥११॥
समुद्भूतो महानादः[२] सम्प्राप्तो भार्गवस्तदा। जयाय वज्रनाभस्य व्याजहार शुभं वचः ॥१२॥

शुक्र उवाच

जयार्थमात्मनो वीर ! भ्रातरं कच्छपानुजम्। पुरस्कृत्य प्रयातव्यं शङ्खं शङ्खसमस्वनम् ॥१३॥
भविष्यति रणस्तीव्रो रिपुसन्त्रासकारकः[३]। जायते समरं तीव्रं रिपूणामतिविह्वलम् ॥१४॥
जित्वा शीघ्रं सुरान् सर्वान् सुरेन्द्रं समराध्वरे। पूरणीयः त्वया पुत्र ! पूर्वजानां मनोरथः ॥१५॥

स्कन्द उवाच

एवं प्रोक्त्वाशु शुक्रेण दत्ताशीर्दैत्यसत्तमः। निर्ययौ स्वबलैः सार्द्धं सुप्रभानगरान्मुने ॥१६॥
खचितैः रत्नजालैश्च नानारथैर्मनोजवैः। प्राप्तवान् मेरूपृष्ठं स वज्रो रथैर्बलान्वितैः ॥१७॥
ततो मेरुं समासाद्य वज्रः सैन्यैः समावृतः। समाह्वयद् रुषा शक्रं युद्धाय वाद्यनिःस्वनैः ॥१८॥
रिपोरागमनं ज्ञात्वा दिक्पालैः सह यानगः। विनिर्ययौ पुराच्छक्रो देवयोधपुरः सरः ॥१९॥
वाद्यञ्चक्रुस्ततो देवा भृशं युद्धविशारदाः। शक्रं प्रणम्य युद्धाय पालयन्तोऽनुशासनम् ॥२०॥
वाद्यानि ताडयामासुर्दानवा रणदुर्जयाः। आज्ञामप्रार्थयन् वज्रं युद्धवीरं महासुरम् ॥२१॥
शरवृष्टिं ससर्जादौ सुरानीके च दानवः। आकर्णमुद्धृतैर्बाणैः स्वस्वनामाङ्कितैर्मुने ॥२२॥
ससर्ज देवसैन्यञ्च बाणवृष्टिं भृशं पुनः। दैत्यानीके रुषाविष्टः स्वाभिधानाङ्कितैः शरैः ॥२३॥
अन्धीभूता दिशः सर्वा नभो निशीव वृष्टिभिः। वाहनानि च यानानि न व्यलक्षयन् सुरासुराः[४] ॥२४॥

---

हे अगस्त्य मुनि ! विभिन्न आवाज निकाल्दै सेनाहरूले ढक्का, दमाहा, झ्याली, शङ्ख, डिण्डिम, कर्णाल आदि गरिएका बाजाहरू बजाए। त्यसैबखत शुक्राचार्य त्यहाँ आए। वज्रनाभलाई विजय गराउन उनले कल्याणमय वचन बोले ॥११-१२॥

शुक्रले भने – हे वीर ! विजयका लागि तिमीले कच्छपका भाइ शङ्खजस्तै स्वर भएको शङ्खासुरलाई अगाडि लगाएर प्रस्थान गर्नुपर्छ। त्यसको शब्द र पराक्रमले तीनै लोक थर्कन्छ। शत्रुलाई विह्वल तुल्याउने खालको ठूलो युद्ध हुन्छ। हे बाबु ! तिमीले युद्धमा सबै देवता र इन्द्रलाई समेत जितेर पूर्वजहरूको इच्छा पूर्ण गर्नुपर्छ ॥१३-१५॥

कार्तिक स्वामीले भन्नुभयो – यति भनेर शुक्रबाट आशीर्वाद पाएको त्यो दैत्य सुप्रभा नाम गरेको शहरबाट आफ्ना सेनाहरूलाई साथमा लिएर निक्लियो। रत्नले जडिएको मनजस्तै दगुर्ने विभिन्न किसिमका रथहरूमा चढ्ने सेनाहरूका साथ वज्रनाभ सुमेरुपर्वतको मध्यप्रदेशमा पुग्यो। सेनासहित सुमेरु पर्वतमा पुगेर वज्रनाभले बाजा बजाउँदै युद्धका निमित्त इन्द्रलाई बोलायो। शत्रु आएको कुरा थाहा पाएर दिक्पालका साथै देवसैन्यलाई अगाडि लगाएर यानमा चढी इन्द्र अमरावतीबाट प्रस्थान गरे ॥१६-१९॥

युद्धमा सिपालु देवताहरूले इन्द्रलाई नमस्कार गरी उनको आज्ञापालन गर्दै बाजा बजाए। युद्धमा कसैले जित्न नसक्ने दानवहरूले पनि बाजा बजाए र युद्धका लागि पर्वतशिखरमा पुगेर उनीहरूले वज्रनाभलाई युद्धका निमित्त अगाडि बढ्न प्रार्थना गरे। सर्वप्रथम दानवहरूले आफ्नो नामले अङ्कित भएका बाणहरू कानसम्म तानेर देवताहरूको सेनामाथि वर्षा गरे। त्यसपछि देवताहरूले पनि राक्षसहरूलाई आफ्नो नामले अङ्कित भएका बाणहरू रिसाएर खूबसित प्रहार गरे। वर्षाको रातमा जस्तै आकाशका सबै दिशाहरू अँध्यारा बने। देवता र राक्षसले आफ्ना र अर्काका यानहरूलाई चिन्न सकेनन् ॥२०-२४॥

---

२. ततस्तस्मिन् क्षणेऽगस्त्य, इति न.सं.पु.पाठः।
३. जायते समरं तीव्रं रिपूणामतिविह्वलम्, इति न.सं.पु.पाठः।
४. जायते समरं तीव्रं रिपूणामतिविह्वलम्, इति न.सं.पु.पाठः।

चिक्षिपुर्दानवा युद्धे प्रासशक्तीश्च तोमरान्। अवयवान् समुद्दिश्य देवानामुपरि ध्रुवम् ॥२५॥
चिक्षिपुर्देवता भूयः शस्त्राणि च स सर्वशः। दैत्यसैन्ये भृशं युद्धे समुद्दिश्यासुरा मुहुः ॥२६॥
चिक्षिपुरुभयोः सेनाश्चाग्न्यस्त्राणि मिथो भृशम्। शस्त्रास्त्रैस्ताः पुनर्जघ्नुः समुद्दिश्य परस्परम् ॥२७॥
शस्त्रास्त्रघर्षणोद्भूतैरग्न्यस्त्रैश्चार्चिषा युतैः[५]। निशीव दीपखद्योतैः सङ्ग्रामः शुशुभे भृशम् ॥२८॥
बभूव तुमुलः शब्दो गर्जितैरमरद्विषाम्। गजानां क्रौञ्चरावैश्च हयानां हेषितैस्तथा ॥२९॥
ततो दिग्पतयोऽगस्त्य ! प्रजघ्नुः कच्छपासुरम्। जयन्तश्चाहनच्छङ्खं शक्रो वज्रं तथा पुनः ॥३०॥
शङ्खः शङ्खस्वरं कृत्वा जघान त्वसिनाऽमरान्। व्यनदत् कच्छपःक्रोधात्त्वगस्थिषु प्रहारतः ॥३१॥
दैत्यराजोऽपि च क्रोधान्नागेन्द्रं शक्रवाहनम्। गदया ताडयामास चैरावतो व्यलोडयत् ॥३२॥
वज्रं चिक्षेप शक्रश्च बलिपुत्रे रुषा पुनः। ततः सोऽपातयद् वज्रं नाभौ बलिसुतस्य च ॥३३॥
तस्य नाभौ ह्यभूल्लग्नः वज्रः स्वर्णगतो यथा। वज्रः शक्रेण संत्यक्तः चापि दैत्यार्दनक्षमः ॥३४॥
वज्रनाभ इति प्रोक्तः सर्वैस्तस्याभिधानतः। ततः प्रभृति दैत्योऽसौ वज्रनाभः प्रचक्ष्यते ॥३५॥
अवतीर्य रथात्तूर्णं वज्रनाभोऽपि वै रुषा। जग्राह मुकुटं दोष्णा सकेशं हि दिवस्पतेः ॥३६॥
तस्मिन् काले ततो दैत्या जघ्नुः शस्त्रैः शरैः सुरान्। रथान् रथैश्च संयोज्य पदातींश्च पदातयः ॥३७॥
तस्मिन् कालेऽशरीरस्य वागुद्बभूव चाम्बरात्। मा मा वज्र ! प्रहन्तव्यो दिवस्पतिः कदेति च ॥३८॥
अशरीरवचो वज्रः श्रुत्वा निववृते तदा। त्रिदशास्तद्भयत्रस्ताः प्रेक्ष्य शक्रार्दनं युधि ॥३९॥
सन्त्यज्यायोधनं देवा भेजिरे हि दिशो दश। मुक्तकेशं पुरोधाय ब्रह्माणं शरणं ययुः ॥४०॥

---

दानवहरूले लडाईंमा भाला, शक्ति, तामेर आदि अस्त्र देवताहरूमाथि उनीहरूको अङ्ग ताकेर प्रहार गरे। देवताले पनि चारैतिरबाट फेरि शस्त्र प्रहार गरे। राक्षसहरूले पनि युद्धमा देवताहरूको सेनालाई लक्ष्य गरेर बारम्बार शस्त्रको प्रहार गरे। दुबैथरी सेनाले परस्परमा अस्त्रहरूको प्रहार गरे। फेरि तिनीहरूले आपसमा ताकाताक गरेर शस्त्र र अस्त्रहरू प्रहार गरे। शस्त्र र अस्त्रको घर्षणबाट निस्किएको आगोले गर्दा त्यो युद्ध जुनकिरीले युक्त भएको रातको आकाशजस्तै विराजमान भयो। दैत्यको गर्जन, हात्तीहरूको चिंघाहट र घोडाहरूको हिनहिनाहटले गर्दा युद्ध कोलाहलमय भयो ॥२५-२९॥

हे अगस्त्य मुनि ! त्यसपछि दिशाका मालिकहरूले कच्छपासुरलाई हिर्काए। त्यस्तै शङ्ख, चक्र र वज्रलाई जयन्तले प्रहार गरे। शङ्खले पनि शङ्खको ध्वनि निकाल्दै देवताहरूलाई तरवारले हान्यो। कच्छपले पनि रीसले क्रुद्ध भएर कराउँदै छाला र हाडहरूमा प्रहार गर्‍यो। दैत्यको राजाले पनि क्रोधइन्द्रको वाहन भएको उत्तम हात्ती ऐरावतलाई गदाले प्रहार गर्‍यो। इन्द्रले बलिका छोरामाथि रीसले वज्र प्रहार गरे। त्यो वज्र बलिका छोराको नाभिमा गएर पतन भयो। स्वर्णमय वज्र नाभिमा गएर टाँसियो। दैत्यलाई मर्दन गर्न सिपालु इन्द्रले पनि त्यो वज्र त्यसै छोडिदिए। त्यसपछि सबै मानिसहरूले त्यसको नाम वज्रनाभ राखे। त्यसै समयदेखि त्यो दैत्य वज्रनाभका नामले प्रसिद्ध छ ॥३०-३५॥

वज्रनाभले रिसाएर दुई हातले कपाल र मुकुटमा समातेर इन्द्रलाई तुरुन्त रथबाट ओराल्यो। त्यसबखत दैत्यहरूले शस्त्र, बाणले देवताहरूलाई प्रहार गरे। त्यहाँ रहेका पैदलसेना पैदलसेनाका साथ र रथसेना रथसेनाका साथ युद्ध गरिरहेका थिए। त्यसै समयमा आकाशवाणी भयो- हे वज्रनाभ ! इन्द्रलाई कहिल्यै पनि प्रहार नगर। अशरीरीको वचन सुनेर वज्रनाभ युद्धबाट फर्कियो। देवताहरू लडाईंमा इन्द्रलाई युद्धपीडित भएको देखेर डरले आत्तिए। देवताहरू युद्ध छोडेर दशै दिशातिर लागे। मुक्तकेशलाई अगाडि लगाएर उनीहरू ब्रह्माको शरणमा गए ॥३६-४०॥

---

५. ...श्चार्चिरुद्गतैः, इति न.सं.पु.पाठः।

द्यौपतिर्दमितो यस्मात्तस्माद्वज्रो हि सर्वतः । इन्द्रदमन इत्याख्यः प्रोक्तः सर्वजनैर्हि सः ॥४१॥
तस्मिन् काले ततोऽगस्त्य ! दानवाः घोरविक्रमाः । विविशुः शक्रराज्यं वै विद्राव्य तरसाऽमरान् ॥४२॥
राज्यं कर्तुं ततो दैत्याः प्रचक्रिरे मुदान्विताः । रत्नालयं समालोक्य विस्मयोत्फुल्लमानसाः ॥४३॥
ततो वज्रोऽमरावत्यां राज्यं कर्तुं मनो दधे । तद्वार्तां ज्ञानवान् ब्रह्मा दैत्यचेष्टाञ्च तादृशीम् ॥४४॥
ततो ब्रह्मा समागत्य यानेन ब्रह्मलोकतः । व्याजहार वचः शीघ्रं वज्रनाभाय तत्र च ॥४५॥

ब्रह्मोवाच

न स्थातव्यं हि दैत्येन्द्र ! युष्माभिरत्र निश्चयम् । मे ज्योतीरक्षिते राज्ये चात्रैव त्रिदशान् विना ॥४६॥
लब्धकीर्तिरभूर्वज्र ! जयेनानेन सन्ततम् । तवेन्द्रदमनो नाम सत्यं सद्यः प्रवर्तते ॥४७॥
विविधोपद्रवैर्युक्ते स्वर्गे त्वया न चोष्यताम् । वस त्वं सुप्रभापुर्यां जित्वा पातालदिक्पतीन् ॥४८॥
मयेनासुरमुख्येन पूर्वकाले सुनिर्मितम् । विलमस्ति महाबाहो जठरे चन्दनागिरेः ॥४९॥
रत्नमयालये दिव्ये रत्नार्चिर्भिर्विराजिते । महाह्रदे रहस्ये च कमलोत्पलभूषिते ॥५०॥
इन्द्रदमन ! गच्छाशु चाकर्ण्य मम शासनम् । स्थातव्यञ्च विले तत्र सुनिर्गतज्वलोज्ज्वले ॥५१॥

स्कन्द उवाच

एवं सम्भाष्य दैत्येन्द्रं प्रस्थाप्य धरणीतलम् । सुरेन्द्रं रणविध्वस्तं भगवानब्रवीत् पुनः ॥५२॥

ब्रह्मोवाच

प्रादुर्भूतः शचीनाथ ! मथुरायां जनार्दनः । कालनेमिसमुद्भूतं कंसं नाम हनिष्यति ॥५३॥
तस्य पुत्रो महावीरः प्रद्युम्न इति विश्रुतः । द्वारकायां यदा जातो मधुकामांशसम्भवः ॥५४॥

---

इन्द्रलाई दमन गरेको हुँदा वज्रलाई सबैले इन्द्रदमन भन्ने नामले सम्बोधन गरे। हे अगस्त्य मुनि ! त्यसबेला डरलाग्दा दानवहरू आएर तुरुन्त देवताहरूलाई भगाउँदै इन्द्रको राज्यमा प्रवेश गरे। रत्नको घरलाई देखेर आश्चर्यचकित हुँदै दैत्यहरूले त्यहाँ सहर्ष राज्य गर्न थाले। त्यसपछि वज्रलाई अमरावतीमा राज्य गर्ने इच्छा प्रकट भयो। त्यो कुरा र दैत्यका चेष्टाहरू ब्रह्माजीले थाहा पाउनुभयो। त्यसपछि ब्रह्माजी ब्रह्मलोकबाट यानमा चढेर त्यहाँ तुरुन्त आउनुभयो र वज्रनाभलाई भन्नुभयो ॥४१-४५॥

ब्रह्माजीले भन्नुभयो - हे दैत्येन्द्र ! देवताबाहेक तिमीहरू मेरो ज्योतिले रक्षित यस राज्यमा बस्न पाउँदैनौ। यो कुरा पक्का हो। हे वज्र ! तिम्रो यो विजयले गर्दा सधैँ कीर्तिमान् भयौ। तिम्रो नाउँ इन्द्रदमन भनेर तुरुन्त फैलिनेछ, यो सत्य हो। विभिन्न उपद्रवले युक्त भएको स्वर्गमा तिमीले बस्नुहुँदैन। सुप्रभा नगरीमा पातालका दिक्पालहरूलाई जितेर तिमी बस। हे महाबाहु ! प्राचीन समयमा चन्दनागिरि पर्वतभित्र मय नाम गरेको दैत्यले उहिले बनाएको ठूलो ओडार छ। हे इन्द्रदमन ! रत्नका कान्तिले सुशोभित भएका रत्नमय दिव्य भवनमा र विभिन्न किसिमका कमलले सुशोभित एकान्त त्यस दहमा तुरुन्त मेरो आज्ञानुसार तिमी जाऊ। तलबाट निक्लिएको ज्वालाले गर्दा उज्यालो भएको त्यस ओडारमा तिमी बस ॥४६-५१॥

कार्तिक स्वामीले भन्नुभयो - यसरी दैत्यलाई पृथ्वीमा पठाएर भगवान्ले युद्धबाट भागेका इन्द्रलाई फेरि भन्नुभयो ॥५२॥

ब्रह्माजीले भन्नुभयो - हे इन्द्र ! मथुरामा भगवान् विष्णुले अवतार लिइसक्नुभएको छ। उहाँले कालनेमि राक्षसको अवतार कंसलाई मार्नुहुनेछ। उहाँका प्रसिद्ध छोरा महावीर प्रद्युम्न वसन्त र कामदेवको अंश भएर द्वारकामा जन्म लिनेछन् ॥५३-५४॥

स काले शम्बरं दैत्यं ते रिपुञ्च हनिष्यति। वज्रनाभञ्च ते शत्रुं सभ्रातरं हनिष्यति ॥५५॥
त्यक्तव्यं खलु नो राज्यं सर्वमेव ममाज्ञया। सुरान् पालय देवेन्द्र ! हित्वा शङ्कां तदीयकाम्[६] ॥५६॥

स्कन्द उवाच

अभिषिक्तः सहस्राक्षः प्रविवेशामरावतीम् ॥५७॥
ब्रह्मापि प्रययौ यानैर्ब्रह्मलोकं गणैः सह। सम्बोध्य त्वरितं शक्रं चाभिषिच्यासुरैः सह ॥५८॥
तत शक्रोऽमरावत्यां सुखानि बुभुजे खलु। सम्पाल्य त्रिदशान् सर्वान् शत्रुतो विगतज्वरः ॥५९॥
अपीन्द्रदमनः शीघ्रं प्रययौ मेदिनीं मुने। ब्रह्मणो वचनं पथ्यमादाय हर्षमानसः ॥६०॥
ततो रसातलं रम्यं प्रविवेश महासुरः। गर्जद्भिर्दर्पितैर्वीरैः स्वसैन्यैः परिवारितः ॥६१॥
रसातलं प्रविष्टे तु दानवे युद्धदुर्मदे। दुद्रुवुः शरणं तस्य पन्नगा राक्षसाः पुनः ॥६२॥
तत्रौकसां हितार्थेन वासुकिर्भुजगाधिपः। दत्त्वा रत्नान्यनेकानि दैत्येन्द्रमिदमब्रवीत् ॥६३॥
जितं पूर्वं भवत्कीर्त्या सर्वमेव रसातलम्। जेतुं नापेक्षते राजन् ! पुनर्नागस्य विग्रहैः ॥६४॥
इत्युक्त्वा प्रददौ चार्घ्यं वज्रनाभाय पन्नगः। ददौ भूयो महार्हाणि नानारत्नानि भूरिशः ॥६५॥
रत्नान्यादाय वज्रोऽसौ मर्त्यलोकं समागमत्। पृथिव्यां स च भूपालान् सर्वान् समजयत्पृथक् ॥६६॥
वस्त्राभरणरत्नानि चावलुण्ठ्य समन्ततः। समादाय ततो वज्रः सुप्रभानगरं ययौ ॥६७॥
ततो मयासुरं दैत्यं समाहूयादिशद्वचः। निर्माणाय पुरीञ्चाशु[७] तद्रत्नैः कनकैर्बहु ॥६८॥
मयश्च निर्ममे स्वर्णैः सुप्रभानगरोत्तमम्। सुस्तम्भैःस्फाटिकैः शुभ्रै रत्नैश्च खचितोज्वलम् ॥६९॥

---

उनले त्यसै बखत तिम्रा शत्रु शम्बर दैत्य र वज्रनाभ दैत्यको भाइका साथ हत्या गर्नेछन्। हे इन्द्र ! मेरो आज्ञाअनुसार यस राज्यलाई तिमीले कहिल्यै नछाड्नू, देवताहरूको रक्षा गर्नू, डर मान्नुपर्दैन ॥५५-५६॥

कार्तिक स्वामीले भन्नुभयो- हे अगस्त्य मुनि ! यसरी ब्रह्माजीले सम्झाएपछि अभिषेक लिएर इन्द्र अमरावतीमा प्रवेश गरे। देवताहरूका साथमा रहेका इन्द्रलाई अभिषेक गरी अह्राइसिकाइ गरेर ब्रह्माजी पनि आफ्ना गणहरूका साथ यानमा चढेर ब्रह्मलोक जानुभयो। त्यसपछि शत्रुबाट ताप हटेका इन्द्रले सबै देवताहरूको पालना गर्दै अमरावतीमा आनन्दसित सुखभोग गरे ॥५७-५९॥

इन्द्रदमन पनि ब्रह्माजीको वचन ठीक हो भन्ने ठानेर हर्षित हुँदै तुरुन्त पृथ्वीतलमा गयो। त्यसपछि घमण्डले गर्जने आफ्ना वीर सेनाहरूका साथ त्यो दैत्य सुन्दर रसातलमा प्रवेश गऱ्यो। युद्धले उन्मत्त भएको त्यो दानव रसातलमा प्रवेश गरेपछि त्यहाँ रहेका अन्य राक्षस र सर्पहरू उसको शरणमा गए। नागका राजा वासुकिले आफ्ना प्रजाको भलाइका लागि धेरै रत्नहरू भेटी दिएर दैत्यराजसित कुरा गर्न थाले - हे राजन् ! यो सारा रसातल तपाईंको कीर्तिले पहिले नै जितिसकिएको छ। फेरि सेना लिएर लड्नुपर्ने कुनै जरुरत छैन ॥६०-६४॥

यति भनेर वज्रनाभलाई नागहरूले फेरि विभिन्न किसिमका बहुमूल्य रत्नहरू ससम्मान समर्पण गरे। वज्रासुरले रत्नहरू लिएर मर्त्यलोकमा गयो। उसले पृथ्वीका सम्पूर्ण राजाहरूमाथि छुट्टाछुट्टै रूपमा विजय हासिल गऱ्यो। त्यसपछि चारैतिरबाट वस्त्र, गहना र रत्नहरू लुटेर वज्रनाभ सुप्रभा नगरमा गयो। त्यहाँ मय नाम गरेको दैत्यलाई बोलाएर उसले ती रत्न र सुनहरूद्वारा आफ्नो शहर बनाउनका लागि आदेश दियो। मयले सुन, स्फटिकका खम्बा र सुन्दर रत्नले जडिएको उज्वल सुप्रभा नाम गरेको शहर बनायो ॥६५-६९॥

---

६. तच्छङ्कां त्यज्य वै खलु, इति न.सं.पु.पाठः।
७. स्वपुरीं निर्मनायाशु, इति न.सं.पु.पाठः।

तस्मिन् राज्ये बहुवरसुखं शक्रतापः सभृत्यः कञ्चित्कालं खलु च बुभुजे देववर्गं प्रशाम्य।
दिग्भ्यः स्वर्गात्सुविपुलकरं नित्यमादाय शश्वत्पातालाद्वै मणिवरचयं मेदिनीपालकाच्च॥७०॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये प्रद्युम्नोत्तरे इन्द्रदमनदिग्विजयो नाम नवषष्ट्युत्तरशततमोऽध्यायः॥१६९॥

---

चक्रवर्ती दैत्यराजको राज्यमा सबै किसिमका सुखहरू थिए। उसले केही समयपछि देवताहरूलाई पनि दमन गर्‍यो र स्वर्गको राज्य लियो। त्यसपछि स्वर्ग, मर्त्य, पाताल तीनै लोकका राजाबाट विभिन्न किसिमका कर, रत्न तथा सुनहरू लिएर भोग गर्‍यो॥७०॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्ड नेपालमाहात्म्यको प्रद्युम्नोत्तरमा इन्द्रदमनको दिग्विजयनामक एकसय उनन्सत्तरिऔं अध्याय पूरा भयो।

# सप्तत्युत्तरशततमोऽध्यायः

## सेतुबन्धनप्रसङ्गः

### स्कन्द उवाच

ततश्च मन्त्रयामास मन्त्रज्ञैः सह मन्त्रिभिः। रोधनाय[1] च वाग्वत्याः स्वसृक्रीडनहेतुतः ॥१॥
उत्पाट्य तरसा शैलं शङ्खो नाम महाबलः। चन्दनाचलमूले वै बबन्ध सुदृढं मुने ॥२॥
उत्पाट्य गिरिसानूनि कच्छपः सहसा पुनः। दोर्भ्यामादाय चाजस्रं बबन्ध दृढबन्धनम् ॥३॥
नियुतानाञ्च नागानां मत्तानाञ्च बलान्वितः। स इन्द्रदमनो भूयश्चोत्पपाट महागिरिम् ॥४॥
दोर्भ्यामुद्धत्य शैलेन्द्रं सेतुं बबन्ध च दृढम्। प्रकीर्णसर्पगोधञ्च नीयमाने स्खलच्छिलम्[2] ॥५॥
चित्रं प्रापुः सुराः सिद्धाः चारणा मुनयोऽम्बरे। तादृशं बन्धनं प्रेक्ष्य प्राग्यथा श्रीहनूमता[3] ॥६॥
संरुध्य वाग्वतीतोयञ्चन्दनाचलमालया। रक्षणाय च तत्सेतुं शङ्खञ्चास्थापयत्तदा ॥७॥
आदिदेशाशु शङ्खाय महेन्द्रदमनो मुदा। रक्ष शङ्ख ! त्विमं सेतुमित्यत्र प्रवसन्सदा ॥८॥
निवत्स्यसि विराध त्वं वाग्वतीशम्बरान्तरे। संवरात्र ह्रदेऽजस्रं रिपून् नैव[4] प्रवेशय ॥९॥
प्रभावति ! महाभागे सखीभिः सह सन्ततम्। अस्मिन् ह्रदे सहोद्याने विहर त्वं यथासुखम्।
भ्रातृभ्योऽसौ भगिन्यै च ह्येवमादिश्य कुम्भज ॥१०॥

---

## अध्याय - १७०

### सेतुबन्धन प्रसङ्ग

कार्तिक स्वामीले भन्नुभयो – त्यसपछि दैत्यराजले आफ्नी बहिनी प्रभावतीलाई जलक्रीडाका लागि वाग्वतीमा बाँध बाँध्ने सम्बन्धमा बुद्धिमान् मन्त्रीहरूसँग सल्लाह गऱ्यो। हे अगस्त्य मुनि ! शङ्ख नाम गरेको बलियो दैत्यले तुरुन्त चन्दनगिरि पर्वतको फेदीमा बलियोसित बाँध बाँध्यो। कच्छप नाम गरेको दैत्यले पहाडका टाकुरा हातले उखेलेर ल्याई वाग्वतीको बाँधलाई अझ बलियो तुल्यायो। हजार मत्तहात्तीको जस्तो बल भएको इन्द्रदमनले फेरि ठूलो पहाड उखेल्यो। पहाडलाई दुई हातले भत्काएर चारैतिर सर्प एवं गोहोरालाई छिताई पर्वतलाई उचालेर लैजाँदा बडे बडे ढुङ्गा खसालेर त्यसले त्यहाँ बलियो पुल बनायो ॥१-५॥

अघि हनुमान्ले जस्तै गरी त्यस्तो पुल बाँधेको देखेर आकाशमा रहेका देवता, सिद्ध, चारण र मुनिहरू तीनछक्क परे। चन्दनगिरिमा वाग्वतीको जल थुनेर त्यहाँ निर्मित पुलको रक्षाको लागि उसले शङ्खासुरलाई नियुक्त गऱ्यो। इन्द्रदमन नाम गरेको राक्षसले शङ्खासुरलाई तुरुन्त आदेश दियो- हे शङ्खासुर ! यस ठाउँमा बसेर सधैं तिमीले यस पुलको हेरचाह गर्नू। हे विराध ! तिमी वाग्वतीको पानीभित्र बस्नू। तिमीले यस तलाउमा बसेर शत्रुलाई प्रवेश गर्न नदिनू। हे भाग्यमानी प्रभावती ! तिमी आफ्ना साथीहरूका साथ बगैंचासहित भएको तलाउमा आनन्दसित सधैं विहार गर ॥६-१०॥

---

१. रुन्धनाय, इति न.सं.पु.पाठः।
२. सर्पगोधक्रीडाक्षेत्रमभून्नीत्वा द्रुमोपलम्, इति न.सं.पु.पाठः।
३. पूर्व इव हनूमता, इति न.सं.पु.पाठः।
४. रिपूणां मा, इति न.सं.पु.पाठः।

कन्याशतविवाहेन प्रविवेश पुरोत्तमम्। स्वर्णगृहैश्च सम्पूर्णे रत्नतोरणशोभिते ॥११॥
तडागोद्यानरुचिरे पुरेऽस्मिन् सुमनोहरे। कामिनीभिः सह स्वेच्छं सततं राजलीलया ॥१२॥
बुभुजेऽतिचिरं सौख्यं वज्रोऽसौ देवदुर्जयः ॥१३॥

त्रिंशत्सहस्राब्दमितं च काल[५] राज्यञ्चकाराऽसुरनायकोऽसौ।
भूपालकन्याः शतधोपभुज्य स शक्रतापो[६] विगतज्वरोऽभूत् ॥१४॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये प्रद्युम्नोत्तरे सेतुबन्धनन्नाम
सप्तत्युत्तरशततमोऽध्यायः ॥१७०॥

---

हे अगस्त्य मुनि ! भाइहरू र बहिनीहरूलाई यसरी निर्देशन दिएर त्यो दैत्य सयवटी केटीहरूसित विवाह गरेर शहरभित्र पस्यो। रत्नका तोरणहरूले सुशोभित भएका, सुवर्णमय घरले खचित बगैंचा र तलाउले सुन्दर देखिने त्यस रमणीय शहरमा देवताले पनि जित्न नसक्ने वज्र नाम गरेको यस दैत्यले कामिनीहरूका साथ राजसी लीला गरेर सुखभोग गऱ्यो ॥११-१३॥

देवताहरूलाई पीडा दिने यस दैत्यले तापबाट मुक्त भएर तीसहजार वर्षसम्म राज्य गर्दै सयौं किसिमले राजाहरूका छोरीहरूसँग भोगविलास गऱ्यो ॥१४॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्ड नेपालमाहात्म्यको प्रद्युम्नोत्तरमा सेतुबन्धननामक
एकसय सत्तरिऔं अध्याय पूरा भयो।

---

५. त्रिंशत्सहस्राब्दगतञ्च यावद्, इति न.सं.पु.पाठः। ६. द्यौपालतापः, इति न.सं.पु.पाठः।

# एकसप्तयुत्तरशततमोऽध्यायः

भगवत्योमया प्रभावत्यै वरप्रदानम्

स्कन्द उवाच

वाग्वती च ह्रदीभूता कमलोत्पलसम्भृता। अगाधातिशयः स्वच्छः शुशुभे तद्ध्रदो भृशम् ॥१॥
मीनैश्च सारसैर्हंसैश्चकोरैः क्रौञ्चपक्षिभिः[१]। हिरण्यैः कमलैश्चान्यैः शुशुभेऽतिशयं ह्रदः ॥२॥
प्रभावती ह्यरंस्तार्या तद्ध्रदे जलनिर्मले। कुमारी सखीभिः सार्धं कमलोत्पलराजिते ॥३॥
बहुरत्नालये रम्ये रमते स्म[२] प्रभावती। क्रीडोद्यानेषु चित्रेषु फलपुष्पाकुलेषु च ॥४॥
सुरम्येषु नगाग्रेषु कन्दरीषु दरीषु च। ह्रदे तस्मिँश्च[३] वाग्वत्या बहुशो रमते स्म सा[४] ॥५॥
मोहयन्ती मनो यूनां निजरूपेण लीलया। सखीभिः सह सा देवी ह्यरंस्त जलक्रीडनैः ॥६॥
एकदा दिवसे देवी ददर्श नारदं मुने। स्वर्णालयान्तरे रम्ये राजभिः पूजितं मुहुः ॥७॥
राजार्हणावसाने तं प्रणिपत्य प्रभावती। पप्रच्छ धर्महेतुञ्च वरपतीप्सया मुदा ॥८॥

प्रभावत्युवाच

प्रष्टुकामाऽधुनाहञ्च सर्ववार्ताविदं मुने। स्त्रीणां हृदि स्थितं लभ्यं केन धर्मेण सर्वदा ॥९॥
को धर्मः सर्वधर्माणां येन लभ्यं हृदेप्सितम्। मन्दभाग्याबलायै तद्वद मे मुनिसत्तम ॥१०॥

---

## अध्याय – १७१

भगवती उमाद्वारा प्रभावतीलाई वरप्रदान

कार्तिक स्वामीले भन्नुभयो – वाग्वती नदी कमलले युक्त भएको तलाउका रूपमा परिणत भयो। त्यो तलाउ अत्यन्त गहिरो, स्वच्छ भएर विराजमान भयो। यो तलाउ माछा, सारौं, हाँस, चखेवा, काकाकुलको आवाज, सुवर्णमय कमल र अरु विशेषताले पनि अत्यन्त सुशोभित भयो। कुमारी प्रभावती आफ्ना सखीहरूका साथ त्यस तलाउको निर्मल जलमा क्रीडा गर्न थालिन्। विभिन्न रत्नहरूको भवन भएको सुन्दर घरमा बसेर उनले सुखभोग गरिन्। विचित्र किसिमका फलफूलले युक्त भएका विभिन्न बगैँचामा उनले विहार गरिन् ॥१–४॥

सुन्दर पहाडका टपु, गुफा, ओडार र वाग्वतीको तलाउमा उनले अनेक किसिमका क्रीडा गरिन्। युवकहरूको मनलाई आफ्नो लीलाद्वारा मोहित तुल्याउँदै ती दैत्यकुमारीले सखीहरूका साथ जलक्रीडा गरिन्। हे अगस्त्य मुनि ! एक दिन सुनले बनाएको सुन्दर घरभित्र बसेका राजाहरूद्वारा पूजित नारद मुनिलाई उनले देखिन्। राजाबाट गरिएको पूजा वा सम्मानको कार्यक्रम सकिएपछि नारदमुनिलाई उनले प्रसन्न हुँदै उत्तम पतिको प्राप्तिका लागि गर्नुपर्ने उत्तम धर्मका विषयमा प्रश्न गरिन् ॥५–८॥

प्रभावतीले भनिन् – हे मुनि ! हजुर सम्पूर्ण वृत्तान्तका ज्ञाता हुनुहुन्छ। त्यसैले म हजुरलाई सोध्न चाहन्छु – स्त्रीजातिको हृदयमा रहेको अभीष्ट कुरा कुन धर्म र कुन रीतिबाट प्राप्त हुन सक्छ ? त्यस्तो कुन धर्म छ जुन धर्म गर्दा मानिसले आफ्नो अभीष्ट प्राप्त गर्न सक्छन्, मन्दभाग्य भएकी यस अबलालाई त्यो कुरा बताइदिनुहोस् ॥९–१०॥

---

१. सखीभिः सह कौमारी, इति न.सं.पु.पाठः।
२. रराम सा, इति न.सं.पु.पाठः।
३. ह्रदीभूते च, इति न.सं.पु.पाठः।
४. रराम बहुशो हि सा, इति न.सं.पु.पाठः।

नारद उवाच

विना देव्या प्रसादञ्च न लभ्यते तदीप्सितम्। योगिनामपि सिद्धानामन्येषाञ्च सुते किमु ॥११॥
अतः पूर्वोत्तरे भागे वाग्वतीप्रभवे गिरौ। तत्राराधय देवीं त्वं सा दास्यति तवेप्सितम् ॥१२॥

स्कन्द उवाच

इत्युक्त्वान्तर्दधेऽगस्त्य ! नारदो हि प्रभावती। तद्वचनञ्च समाधाय धर्मञ्चचार सन्ततम् ॥१३॥
उमाया मृण्मयीं मूर्तिं प्रभादेवी गिरिं गता[५]। पञ्चोपचारकैर्भक्त्या पूजयामास सन्ततम्[६] ॥१४॥
वाग्वतीप्रभवे स्नात्वा साराध महेश्वरीम्। नियमैर्गीतवाद्यैश्च ह्युषित्वा मासमेककम् ॥१५॥
चैत्रसितद्वितीयायां पूजिता च महानिशि। आविर्बभूव सा देवी वरं दातुं तदीप्सितम्[७] ॥१६॥
अभिप्रेक्ष्याशु सा देवी योगीश्वरीं ननाम वै। भक्त्या च स्तुतिभिर्दिव्यैः समर्हणैरपूपुजत् ॥१७॥
अतिपुलकितदेहा प्रेक्ष्य देवीञ्च देवी विपुलवरप्रदां सम्पूज्य पञ्चोपचारैः।
प्रणतिविनयभावैः सम्परिक्रम्य भक्त्या तुहिनगिरिसुतां सा चाब्रवीत्साधु वाक्यम् ॥१८॥

प्रभावत्युवाच

योगीश्वरि ! नमस्तेऽस्तु त्वत्पादाब्जप्रदर्शनात्। अद्यैव सफलं सर्वं तपोदानव्रतं भवेत् ॥१९॥
जानामि सति मे कार्यं सिद्धं मनोरथं तथा। अनुरूपं प्रभुं देहि मातः सर्वमनोहरम् ॥२०॥

स्कन्द उवाच

श्रुत्वैतद्वचनं तस्या देवी प्रफुल्ललोचना। भावभक्तिं समालोक्य शुभं वचनमब्रवीत् ॥२१॥

---

नारदले भन्नुभयो – योगी र सिद्धहरूका लागि पनि भगवतीको कृपा नभईकन हृदयको चाहना प्राप्त हुन सक्दैन। हे छोरी ! अरूको त के कुरा। यसैले यहाँबाट पूर्वोत्तर दिशामा विद्यमान वाग्वतीको उत्पत्तिस्थल भएको पर्वतमा गएर भगवतीको आराधना गर, तिमीलाई उहाँले इच्छा लागेको वर दिनुहुनेछ ॥११-१२॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! यति भनेर नारदमुनि अन्तर्धान हुनुभयो। प्रभावतीले पनि उहाँकै वचनको अनुसरण गरेर बारम्बार धर्म गरिन्। हे अगस्त्य मुनि ! त्यस ठाउँमा प्रभावतीले माटाको भगवतीको मूर्ति बनाइन् र प्रसन्न भएर निरन्तर सभक्ति पञ्चोपचार विधिले त्यसको पूजा गरिन् ॥१४॥ वाग्वती उत्पत्ति भएको स्थलमा स्नान गरेर गीत गाउँदै, बाजा बजाउँदै नियमपूर्वक एक महिनासम्म उपवास बसेर उनले भगवतीको आराधना गरिन् ॥१३-१५॥

यसरी पूजा गरिएकी भगवती चैत्रशुक्ल द्वितीयाको दिन राति उनलाई चाहना अनुरूपको वर दिन प्रकट हुनुभयो। तिनले योगीश्वरी देवीलाई देख्नासाथ तुरुन्त नमस्कार गरिन्, भक्तिपूर्वक स्तुति गरिन् र दिव्य पूजासामग्रीले पूजा गरिन्। हर्षले प्रफुल्लित भएकी प्रभावतीले सम्पूर्ण मनको कामना पूर्ण गरिदिने हिमालयपुत्री महेश्वरी पार्वतीलाई विभिन्न किसिमका सामग्रीले पञ्चोपचार विधिले पूजा गरिन् र प्रणति एवं भावपूर्ण विनतिका साथ भक्तिपूर्वक नमस्कार गरेर हिमालयकी छोरी पार्वतीलाई उत्तम वचनद्वारा सम्बोधन गर्न लागिन् ॥१६-१८॥

प्रभावतीले भनिन् – हे योगीश्वरी ! हजुरलाई नमस्कार छ। हे सती ! हजुरको पाउरूपी कमलको दर्शन पाएर मेरा सम्पूर्ण तपस्या, दान, व्रत आज सफल भएका छन् भन्ने मैले ठानेको छु। मेरो कार्य सिद्ध भयो। हे आमा ! सबभन्दा राम्रो र म अनुसारको पति दिनुहोस् ॥१९-२०॥

कार्तिक स्वामीले भन्नुभयो – उनको यो वचन र भाव तथा भक्ति देखेर प्रफुल्ल नेत्र भएकी देवीले मङ्गलमय वचन भन्न लाग्नुभयो ॥२१॥

---

५. प्रतिमां मृण्मयीमुमाम्, इति न.सं.पु.पाठः।　　६. अपूपुजन् मुदानिशम्, इति न.सं.पु.पाठः।
७. वरदानाय तत्स्पृहाम्, इति न.सं.पु.पाठः।

उमोवाच

एवमेव सुरूपे ते यत्त्वया वाञ्छितः प्रियः। मम प्रदर्शनान्नूनं लप्स्यसे त्वं[८] न संशयः ॥२२॥
कृष्णपुत्रो महावीरः प्रद्युम्नो नाम विश्रुतः। मत्प्रभावाद्धि स स्वप्नं प्राप्य त्वत्रागमिष्यति ॥२३॥
चैत्रकृष्णचतुर्दश्यामद्यतो द्वादशे दिने। तीर्थयात्राच्छलेनाशु दर्पकोऽत्रागमिष्यति[९] ॥२४॥
चौरवृत्तिं समासाद्य विवाहेन निशि ध्रुवम्। इमाञ्चन्द्रवतीं त्वाञ्च द्वारकां स प्रणेष्यति ॥२५॥
प्रभावति ! द्रुतं सोऽत्र भ्रातरस्ते हनिष्यति[१०]। वाग्वती च ह्रदीभूता मुक्ता गङ्गां हि यास्यति ॥२६॥

स्कन्द उवाच

इत्युक्त्वान्तर्दधे देवी दत्त्वा ताभ्यां वरोत्तमम्। तच्छिखरे ह्युमागस्त्य ! भासयन्ती दिशोऽखिलाः[११] ॥२७॥
द्वारवत्यां तदा लेभे प्रद्युम्नोऽपि पुनर्निशि[१२]। क्रीडनञ्च प्रभावत्या बलिपुत्र्या समं सुखम् ॥२८॥

प्रद्युम्नोऽभूदुषसि च भृशं विह्वलाङ्गस्तदासौ
धैर्यं त्यक्त्वा[१३] कथमपि पुनः द्रष्टुकामः प्रियां ताम्।
आधायाऽसौ[१४] हरिमपि तदा प्रस्थितः स्नानव्याजै-
र्नेपाले चाखिलसुरवरैः पूजिते तीर्थसङ्घे ॥२९॥

इति श्रीस्कन्दपुराणे हिमवतखण्डे नेपालमाहात्म्ये प्रद्युम्नोत्तरे उमावरप्रदानं नाम
एकसप्तत्युत्तरशततमोऽध्यायः ॥१७१॥

---

उमाले भन्नुभयो – हे सुन्दरी ! तिमीले भनेको जस्तै हुनेछ। मेरो दर्शन पाएको हुँदा तिमीले जस्ता प्रेमीको चाहना गरेकी थियौ त्यस्तै प्रिय पति पाउनेछ्यौ, यसमा शङ्का छैन। कृष्णका पुत्र महावीर प्रद्युम्न द्वारकामा छन्। मेरो अनुकम्पाले गर्दा तिनले सपनामा तिमीलाई देख्नेछन् र यहाँ आउनेछन्। चैत्रकृष्ण चतुर्दशी, आजको बाह्र दिनका दिन तीर्थयात्रा गर्ने निहुँले कामदेव अर्थात् प्रद्युम्न यहाँ आउनेछन्। प्रद्युम्नले राति चोरी गरेर तिमीलाई विवाह गर्नेछन् र यी चन्द्रावती र तिमीलाई उनले द्वारका लैजानेछन्। हे प्रभावती ! यसै ठाउँमा तिनले तिम्रा दाजुभाइहरूलाई युद्धमा मार्नेछन्। त्यसपछि तलाउ भएर जमेको वाग्वती नदी प्रवाहित भई गङ्गामा गएर मिल्नेछ ॥२२–२६॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! यति भनेर प्रभावती र चन्द्रावतीलाई उत्तम वर दिएर आफ्नो कान्तिले दिशाहरूलाई उज्यालो तुल्याउँदै भगवती त्यसै शिखरमा अन्तर्धान हुनुभयो। उता द्वारकामा प्रद्युम्नले राति स्वप्नमा बलिकी छोरी प्रभावतीसँग सुखपूर्वक भोग गरेको देखे। बिहान उठेर प्रद्युम्न रातिको स्वप्नलाई सम्झँदै अत्यन्त विह्वल भए। कुनै किसिमबाट धैर्य लिएर नेपाल देशका तीर्थहरूमा स्नान गर्न जाने निहुँले आफ्ना पिता भगवान् श्रीकृष्णसँग अनुमति मागेर प्रभावतीलाई भेट्न प्रस्थान गरे ॥२७–२९॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवतखण्ड नेपालमाहात्म्यको प्रद्युम्नोत्तरमा उमाद्वारा वरप्रदाननामक
एकसय एकहत्तरौं अध्याय पूरा भयो।

---

८. जानीव देहि नौ कार्यं सिद्धं मनोरथं सति, इति न.सं.पु.पाठः।
९. दर्पकोऽत्रागमिष्यति, इति न.सं.पु.पाठः।
१०. बधिष्यति, इति न.सं.पु.पाठः।
११. स्वभाभिर्भासयन् दिशः, इति न.सं.पु.पाठः।
१२. प्रद्यम्नो ह्यलभन्निशि, इति न.सं.पु.पाठः।
१३. धर्यं नीत्वा, इति न.सं.पु.पाठः।
१४. आच्छ्याऽसौ, इति न.सं.पु.पाठः।

# द्विसप्तत्युत्तरशततमोऽध्यायः

कृष्णपुत्रस्य प्रद्युम्नस्य तीर्थयात्राप्रसङ्गः

प्रद्युम्न उवाच

भगवन् ! गन्तुमिच्छामि तीर्थयात्रां समुत्तरे। यस्माद् विमोच्ये लोकेऽहं[1] सर्वपापैर्जनार्दन ! ॥१॥
नैपालेषु च तीर्थेषु स्नातव्यं क्रमशो विभो। नय मां तेषु तीर्थेषु स्नास्यामि त्वत्प्रसादतः[2] ॥२॥
शम्बरस्य वधे पापैर्लिप्तोऽहञ्च विशेषतः। तानि पापानि सद्योऽहं मोक्तुकामोऽधुना विभो ॥३॥

स्कन्द उवाच

इत्याकर्ण्य वचः कृष्णः प्रद्युम्नस्य तदा मुने। ताक्ष्यञ्च स्मृतवान् सद्यस्तीर्थयात्रेहया विभुः ॥४॥
बद्धाञ्जलिर्मुने तार्क्ष्यः प्रोवाच वचनं हरिम्। किङ्करोऽहं विभो ! ते तत्किङ्करोमि विधीयताम् ॥५॥
इत्याकर्ण्य वचः कृष्णस्तार्क्ष्यभक्तिभिरीरितम्। व्याचष्ट वचनं तस्मै मधुरैर्ललितैः पदैः[3] ॥६॥
तीर्थयात्रामहं तार्क्ष्य ! कर्तुमीहे सुतैः समम्। अतः संस्मारितः सद्यो[4] हिमाद्रिसम्भवेषु च ॥७॥
इत्युक्त्वा सहसा कृष्णस्तार्क्ष्यपृष्ठं रुरोह सः[5]। प्रद्युम्नगदसाम्बैश्च चक्रपाणिः समं मुने ॥८॥
व्याचष्ट वचनं कृष्णो नीयमानो गरुत्मति। आत्मजेभ्यस्तदागस्त्य ! दर्शयन्नम्बरात् क्षितिम् ॥९॥

श्रीकृष्ण उवाच

यात्रोत्सवरतानां हि रम्यकालो हि वर्तते। नैपालेषु च तीर्थेषु स्नातव्यं चैत्रके किल ॥१०॥
पश्य स्वच्छजलैः पूर्णं ह्रदञ्च दीर्घिकां तथा। प्रसन्नसलिलैः पूर्णाः सर्वाः पश्य सरिद्वराः ॥११॥

---

## अध्याय - १७२

भगवान् कृष्णका सुपुत्र प्रद्युम्नको तीर्थयात्राप्रसङ्ग

प्रद्युम्नले भगवान् श्रीकृष्णलाई भने – हे भगवन् ! सम्पूर्ण पापहरूको मुक्तिका लागि म उत्तरपट्टिका तीर्थहरूको यात्रा गर्न चाहन्छु। नेपालमा जति तीर्थ छन्, ती सबै तीर्थमा स्नान गर्नुपरेको छ। हे प्रभो ! क्रमशः मलाई ती तीर्थमा लैजानुहोस्। हजुरको अनुकम्पाले म स्नान गर्न चाहन्छु। विशेष गरी शम्बरासुरलाई मारेको हुँदा मलाई पाप लागेको छ। हे प्रभो ! म ती सबै पापलाई अहिले निवारण चाहन्छु ॥१-३॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! प्रद्युम्नको यो कुरा सुनेर तीर्थयात्राका लागि भगवान् कृष्णले गरुडलाई सम्झनुभयो। त्यसपछि गरुडले त्यहाँ आएर हात जोड्दै भगवान्सित भने – हजुरको यो किङ्कर अर्थात् सेवक हाजिर छ। के गर्नुपर्‍यो ? आज्ञा पाऊँ। गरुडले भक्तिपूर्वक निवेदन गरेपछि भगवान् कृष्णले सरस एवं मधुर वचनद्वारा गरुडलाई भन्नुभयो – हे गरुड ! म आफ्ना छोराहरूलाई साथमा लिएर हिमालयपर्वतका तीर्थस्थलहरूको यात्रा गर्न चाहन्छु त्यसैले मैले तिमीलाई तुरुन्त सम्झिएको हुँ। हे अगस्त्य मुनि ! यति भनेर हातमा चक्र लिएका भगवान् कृष्ण प्रद्युम्न, गद र साम्बलाई साथमा लिई गरुडको पिठ्यूँमा चढ्नुभयो। गरुडले बोकेर हिँडेपछि भगवान् कृष्णले आकाशबाट पृथ्वीतिर देखाउँदै आफ्ना छोराहरूलाई भन्न लाग्नुभयो ॥४-८॥

श्रीकृष्णले भन्नुभयो – यात्रालाई उत्सवका रूपमा लिने मानिसका लागि यो अत्यन्त सुन्दर समय छ। नेपालका तीर्थहरूमा खासगरी चैत्रका दिनहरूमा स्नान गर्नुपर्छ। हेर, तलाउ स्वच्छ पानीले भरिएको छ। त्यस्तै पोखरीहरू स्वच्छ देखिन्छन्। सम्पूर्ण नदीहरू सफा पानीले भरिएका छन् ॥१०-११॥

---

१. यस्माद्विमुच्यते चाहम्, इति न.सं.पु.पाठः।
२. नय तेषु च तां तीर्थान् स्नायते त्वत्प्रसादतः, इति न.सं.पु.पाठः।
३. मधुरयन् वचोत्तमम्, इति न.सं.पु.पाठः।
४ अतः स्मृतोऽहं सद्योऽहम्, इति न.सं.पु.पाठः।
५. समारुहत्, इति न.सं.पु.पाठः।

पश्याशु धरणीं रम्यां नानापक्षिगणैर्युताम्। तीर्थान्येतानि पश्यार्य हिमाद्रिसम्भवानि च ॥१२॥
एतां पश्यत कावेरीं स्नायात विधिवत्सुताः। अस्याञ्च स्नानमात्रेण चाश्वमेधशतं भवेत् ॥१३॥
विगस्तिं पश्य हे काम ! स्नायात[६] भक्तितः पुनः। स्नातकास्ते[७] हि चैतस्यां गोकोटिफलमाप्नुयुः ॥१४॥
पश्य महानदीं सिञ्वामत्र स्नानसुखेन च[८]। अत्रैव स्नानमात्रेण गोकोटिफलमाप्नुयात् ॥१५॥
शतद्रुं पश्य पुत्रेमां भक्त्यास्यां स्नायतां पुनः। नरमेधशतं स्नानात्स्नातकैः प्राप्यते क्षणात् ॥१६॥
इमां सरस्वतीं पश्य चास्याञ्च स्नाहि भक्तितः। सर्वमेधशतं प्राप्य वागीशत्वं भवेत्क्षणात् ॥१७॥
व्यासगङ्गां पुरः पश्य चास्याञ्च स्नायतां सुत। अस्याञ्च स्नानमात्रेण सायुज्यं मयि लभ्यते ॥१८॥
पश्य महानदीं गङ्गामस्याञ्च स्नायतां पुनः। कोटिजन्मार्जितैः पापैः स्नाता सकृद्विमुच्यते ॥१९॥
अस्यामलकनन्दायां स्नायतां स्नातकः पुनः। परत्रेह कृतं पापं त्यक्त्वा रुद्रपुरं व्रजेत् ॥२०॥
पश्य त्रिविक्रमां गङ्गां मम पादोद्भवां पराम्। अस्यां स्नाता च पुण्यात्मा मल्लोकं खलु गच्छति ॥२१॥
गोमत्यां स्नायतामस्यां भक्तिपूर्वं हि मन्मथ। गवां कोटिफलं प्राप्य गोलोकं हि व्रजेत्खलु ॥२२॥
शतरुद्रां नदीं पश्य चास्याञ्च स्नायतां पुनः। गवां कोटिफलं प्राप्य पुण्यात् शिवपुरं व्रजेत् ॥२३॥
पश्य महानदीं रेवां स्नायतां भक्तितः स्मर। अस्यां स्नाता हि पुण्यात्मा मम लोकं व्रजेत्सुधीः ॥२४॥
स्नायतां कालिकायाञ्च गण्डक्यां भक्तितः सुत। सर्वजन्म परित्यज्य मम लोकं स गच्छति ॥२५॥

---

हे बाबु ! विभिन्न पक्षीहरूले भरिएको यो सुन्दर पृथ्वीलाई हेर। हिमालयमा रहेका यी तीर्थहरूको दर्शन गर। यो कावेरी नदीको दर्शन गर र यहाँ विधिपूर्वक स्नान गर, यस नदीमा स्नान मात्रै गऱ्यो भने पनि सयवटा अश्वमेध यज्ञ गरेको फल प्राप्त हुन्छ। हे प्रद्युम्न ! यो विगस्तिलाई हेर। यहाँ भक्तिपूर्वक स्नान गर, यस नदीमा स्नान गर्ने व्यक्तिले करोडौँ गाई दान गरेको फल प्राप्त गर्छ। यो सिञ्वा नाम गरेको ठूलो नदीलाई हेर। यहाँ स्नान गर्नाले करोडौँ गाई दान गरेको फल प्राप्त हुन्छ ॥१२–१५॥

हे छोरा ! यी शतद्रु नाम गरेकी नदीलाई हेर, यसमा भक्तिपूर्वक स्नान गर्नुपर्दछ। यस नदीमा स्नान गर्ने व्यक्तिले सयवटा नरमेध यज्ञ गरेको फल पाउँछ। यी सरस्वती नदी हुन्, हेर। यहाँ भक्तिपूर्वक स्नान गर, यसमा स्नान गर्नाले सबै यज्ञ गरेको फल प्राप्त गरेर तुरुन्त वाणीको मालिक अर्थात् बृहस्पति बन्न पाउँछ। अघिल्तिर व्यास गङ्गालाई हेर। हे छोरा ! यहाँ स्नान गर, यस नदीमा स्नानमात्रै गऱ्यो भने पनि ममा लीन हुन पाइन्छ। यी महानदी गङ्गाको दर्शन गर र यस नदीमा स्नान गर। यसमा एकपटक मात्रै पनि स्थान गऱ्यो भने करोडौँ जन्ममा गरेका पापबाट मुक्ति पाइन्छ ॥१६–१९॥

हे प्रद्युम्न ! यी अलकनन्दा हुन्। यहाँ स्नान गर। यसमा स्नान गर्ने व्यक्ति यो जुनी र अर्को जुनीमा गरेका पापलाई पखालेर रुद्रलोकमा जान पाउँछ। मेरो पैतालाबाट पैदा भएकी अर्की त्रिविक्रमा नाम गरेकी गङ्गालाई हेर। यसमा स्नान गऱ्यो भने अपवित्र आत्मा भएको व्यक्ति पनि मेरो लोकमा जान्छ। हे कामदेव ! यी गोमती नदीमा भक्तिपूर्वक स्नान गर। यसमा स्नान गर्नाले करोडौँ गाई दान गरेको फल प्राप्त गरेर गोलोकमा जान पाइन्छ ॥२०–२२॥

हे प्रद्युम्न ! यी शतरुद्रा नदी हुन्। यसमा तिमीले स्नान गर्नू। यस नदीमा स्नान गर्नाले आत्मा पवित्र हुन्छ र त्यो करोडौँ गाई दान गरेको फल प्राप्त गरी भगवान् शङ्करको लोकमा जान्छ। हे कामदेव ! यो ठूलो रेवा नदी हो। यसमा भक्तिपूर्वक स्नान गर। यस नदीमा स्नान गर्ने बुद्धि भएको व्यक्तिको आत्मा पवित्र हुन्छ र ऊ मेरो लोकमा जान्छ। यी कालीगण्डकी हुन्। यसमा भक्तिपूर्वक स्नान गर। यसमा स्नान गर्ने व्यक्ति सम्पूर्ण जन्मलाई त्याग गरेर मेरो लोकमा जान पाउँछ ॥२३–२५॥

---

६. कामाशु स्नायताम्, इति न.सं.पु.पाठः। ७. स्नातकानाम्, इति न.सं.पु.पाठः।
८. च स्नायतां पुनः, इति न.सं.पु.पाठः।

गङ्गाख्यायाञ्च गण्डक्यां स्नायतां विधिवत्स्मर। गवां लक्षोद्भवं प्राप्य रुद्रलोकं स गच्छति ॥२६॥
कौमार्यां खलु गण्डक्यामस्याञ्च स्नायतां पुनः। अश्वमेधफलं प्राप्य स गच्छेदैश्वरं पुरम् ॥२७॥
भद्रावत्यां महानद्यां स्नायतां विधिवत्पुनः। गवां कोटिफलं प्राप्य शक्रलोकं वसेत्सुखी ॥२८॥
मत्प्रियायाञ्च वैष्णव्यां गण्डक्यां स्नायतां पुनः। गवां नियुतजं प्राप्य मम लोकं स गच्छति ॥२९॥
स्नायतां नारसिंह्याञ्च ह्यस्यां स्नाता नरोत्तमः। दशाश्वमेधजं प्राप्य मम लोकं स गच्छति ॥३०॥
ततो ब्राह्म्याञ्च गण्डक्यां स्नायतां भक्तितः स्मर। सर्वयज्ञफलं लब्ध्वा ब्रह्मलोकं स गच्छति ॥३१॥
गणेशाख्ये महाकुण्डे स्वर्णाकूटाचले पुरः। यः संस्नाति[९] सुधीः पुत्र ! कार्यसिद्धिं स लप्स्यति ॥३२॥
गणेशेन पुरा तप्तं लब्धा सिद्धिश्च तत्र वै[१०]। स्नातकः सिद्धिभाग् धीर ! गणलोकं स गच्छति ॥३३॥
माहेश्वर्याञ्च गण्डक्यामस्याञ्च स्नायतां सुत। कोटिगोमेधजं प्राप्य रुद्रलोकं स गच्छति ॥३४॥
नीलकण्ठमहाकुण्डे भक्त्या यः स्नाति मन्मथ[११]। विहाय चोद्भवं स्नात्वा रुद्रलोकं व्रजेत्सुधीः ॥३५॥
एषु त्रिसप्तकुण्डेषु भक्त्या संस्नायतां पुनः। इहलोकं परित्यज्य स्नाता गच्छति वै परम् ॥३६॥
दुर्गाख्यायाञ्च कौशिक्यां स्नातव्यं भक्तितः सुत। गच्छत्यस्यां परं स्नाता विहाय दुःखसंसृतिम् ॥३७॥
नारायण्याञ्च कौशिक्यां भक्त्या यः स्नाति मन्मथ[१२]। गवां लक्षफलं लब्ध्वा रुद्रलोकं स गच्छति ॥३८॥
स्नायते चण्डिकाख्यायां कौशिक्यां भक्तितो हि यः। नरमेधशतं प्राप्य रुद्रलोकं स गच्छति ॥३९॥

---

हे कामदेव ! गङ्गा नाम गरेकी यी गण्डकीमा विधिपूर्वक स्नान गर। यहाँ स्नान गर्ने व्यक्ति लाख गाई दान गरेको फल प्राप्त गरेर रुद्रलोकमा जान्छ। त्यसपछि कौमारी नाम गरेकी यी गण्डकीमा स्नान गर। यसो गर्ने व्यक्तिले अश्वमेध यज्ञ गरेको फल प्राप्त गरेर शिवलोकमा जान्छ। अनि भद्रावती नाम गरेको ठूलो नदीमा विधिपूर्वक स्नान गर, यसमा स्नान गर्ने पुरुष करोडौं यज्ञ गरेको फल प्राप्त गरेर इन्द्रलोक जान्छ र सुखसित त्यहाँ बस्छ। मेरो अत्यन्त प्रिय वैष्णवी नाम गरेकी यी गण्डकीमा स्नान गर। यसमा स्नान गर्ने व्यक्तिले दश हजार गाई दान गरेको फल प्राप्त गरेर मेरो लोक अर्थात् वैकुण्ठ जान पाउँछ। यी नारसिंही नदी हुन्, यसमा स्नान गर। यस नदीमा स्नान गर्ने मानिसले दश अश्वमेध यज्ञ गरेको फल पाउँछ र मेरो लोक अर्थात् वैकुण्ठमा जान्छ ॥२६-३०॥

हे कामदेव ! त्यसपछि ब्राह्मी नाम गरेको गण्डकीमा भक्तिपूर्वक स्नान गर। यसमा स्नान गर्ने व्यक्ति सम्पूर्ण यज्ञको फल प्राप्त गरेर ब्रह्मलोक जान्छ। हे छोरा ! स्वर्णकूट पर्वतको सामुन्नेमा रहेको गणेश महाकुण्डमा जुन बुद्धि भएको मानिसले स्नान गर्छ त्यसको कार्यसिद्धि हुन्छ। हे बाबु ! अघि यहाँ गणेशले तपस्या गरेर सिद्धि प्राप्त गर्नुभएको थियो। यहाँ स्नान गर्ने व्यक्ति गणेशको लोकमा जान्छ ॥३३॥ हे छोरा ! माहेश्वरी नाम गरेकी यी गण्डकीमा स्नान गर। यहाँ स्नान गर्ने व्यक्ति करोडौं गोमेध यज्ञ गरेको फल प्राप्त गरेर रुद्रलोकमा जान्छ। जसले यो नीलकण्ठ महाकुण्डमा स्नान गर्छ त्यो व्यक्ति सधैं जन्मनुपर्ने स्थितिलाई छोडेर रुद्रलोकमा जान्छ। यी एक्काइसवटा कुण्डमा भक्तिपूर्वक फेरि स्नान गर। यी कुण्डमा स्नान गर्ने व्यक्ति यो लोक छोडेपछि परमपदमा पुग्छ ॥३१-३६॥

हे छोरा ! दुर्गानाम गरेकी यी कौशिकीमा भक्तिपूर्वक स्नान गर। यस नदीमा स्नान गर्ने व्यक्तिले दुःखको संसारलाई त्यागेर परमपद पाउँछ। नारायणी कौशिकी नदीमा जसले भक्तिपूर्वक स्नान गर्छ लाखौं गाई दान गरेको फल प्राप्त गरेर त्यो रुद्रलोकमा जान्छ। चण्डिका नाम गरेकी कौशिकी नदीमा जसले स्नान गर्छ सयवटा नरमेध यज्ञ गरेको फल प्राप्त गरेर त्यो रुद्रलोकमा जान्छ ॥३७-३९॥

---

९. स्नायते, इति न.सं.पु.पाठः।
१०. गणेश्वरेण पुरा तप्तं सिद्धं लब्धञ्च तत्र वै, इति न.सं.पु.पाठः।
११. स्नायते स्मर, इति न.सं.पु.पाठः।
१२. स्नायते स्मर, इति न.सं.पु.पाठः।

संस्नाति शिवदूत्यां यः कौशिक्यां भक्तितः सुत। स्नातास्यां खलु पुण्यात्मा गोकोटिफलमाप्नुयात्[१३] ॥४०॥
स्नाहि पुत्र ! कपर्दिन्यां कौशिक्यां हि प्रणम्य च। दशकोटिमखं प्राप्य रुद्रलोकं स गच्छति ॥४१॥
वाराह्यां स्नायतामस्यां कौशिक्यां भक्तितः सुत। अश्वमेधशतं लब्ध्वा स्नाता गच्छति शाङ्करम् ॥४२॥
वासव्यां खलु कौशिक्यां स्नायतां तां प्रणम्य च[१४]। शताश्वमेधजं प्राप्य स्नाता गच्छति वै दिवम् ॥४३॥
दुर्गातीर्थे सुत स्नाहि भीमतीर्थे ततः पुनः। शचीतीर्थे च संस्नाहि स्पृहातीर्थे विशेषतः ॥४४॥
योगतीर्थे पुनः स्नात्वा दोलाद्रिश्च प्रणम्यताम्। रत्नह्रदे खलु स्नात्वा स्नाहि शङ्खह्रदे पुनः ॥४५॥
मे मूर्त्तिं पश्य कन्दर्प ! योऽद्रिमारुह्य पश्यति। मल्लोकं स व्रजेद्धीरो विहाय संसृतिं खलु ॥४६॥
रत्नवत्यां ततः स्नाहि वीरभद्रे हि दर्पक। गन्धर्वाख्ये जले स्नाहि विमलाम्बुजले पुनः ॥४७॥
गोदावरीसमुद्भूते स्नात्वा तीर्थे ततः पुनः। चित्रह्रदजले स्नात्वा चन्द्रवत्या जले तथा[१५] ॥४८॥
प्रभातीर्थे सुत स्नाहि सारस्वते[१६] च सुन्दरे। व्याघ्रतीर्थे ततः स्नात्वा धर्मगङ्गाजले पुनः ॥४९॥
कनखले ततः स्नात्वा मीनतीर्थे ततः पुनः। नवधाराजले स्नाहि शक्रह्रदे तथा पुनः ॥५०॥
रुद्रवतीसमुद्भूते भक्तितः स्नायतां सुत। ह्रदे चोशीरबीजाख्ये पवित्रे स्नायतां सुत ॥५१॥
लुण्ठिकाश्रममूले च संस्नाति यो हि पण्डितः। दशगवां फलं प्राप्य शक्रलोकं स गच्छति ॥५२॥
सिद्धरसाजले स्नात्वा स्कन्दतीर्थे ततः पुनः। विष्णुपदीसमुद्भूते स्नायतां खलु मे प्रिय ॥५३॥
नारसिंहीजले स्नात्वा ज्येष्ठिलायाः समुद्भवे। धर्मनदीसमुद्भूते भक्त्या च स्नायतां पुनः ॥५४॥

---

हे छोरा ! शिवदूती नाम गरेकी कौशिकी नदीमा जसले स्नान गर्छ त्यसले करोडौं गाई दान गरेको फल प्राप्त गर्छ र पवित्र हुन्छ। हे छोरा ! कपर्दिनी नाम गरेको यो कोशी नदीलाई प्रणाम गरेर स्नान गर। यसमा स्नान गर्ने व्यक्ति दश करोड यज्ञ गरेको फल प्राप्त गरेर रुद्रलोक जान्छ। यी वाराही नाम गरेकी कौशिकीमा भक्तिपूर्वक स्नान गर। सय अश्वमेध यज्ञ गरेको फल प्राप्त गरेर यसमा स्नान गर्ने व्यक्ति शिवजीको लोकमा जान्छ ॥४०–४२॥

हे छोरा ! यी वासवी नाम गरेकी कौशिकी हुन्। यिनलाई नमस्कार गरेर स्नान गर। सय अश्वमेध यज्ञको फल प्राप्त गरेर यसमा स्नान गर्ने व्यक्ति स्वर्ग जान्छ। हे छोरा ! दुर्गातीर्थ, भीमतीर्थ र शचीतीर्थ र स्पृहातीर्थमा विशेष गरी स्नान गर। योगतीर्थमा स्नान गरेर दोलाचल पर्वतलाई नमस्कार गर। रत्नदहमा स्नान गर। रत्नदहमा स्नान गरेर फेरि शङ्खदहमा स्नान गर ॥४३–४५॥

हे कन्दर्प ! यस पर्वतमा चढेर मेरो मूर्तिलाई हेर। जसले यस पर्वतमा आरोहण गरेर मेरो मूर्तिको दर्शन गर्दछ त्यसले संसारलाई छोडेपछि मेरो लोकमा बस्न पाउँछ। रत्नावतीमा स्नान गरेर वीरभद्र तीर्थमा स्नान गर। त्यसपछि अत्यन्त निर्मल जल भएको गन्धर्वतीर्थमा स्नान गर। हे कामदेव ! गोदावरीबाट पैदा भएको तीर्थमा स्नान गर। त्यसपछि चित्रदहमा स्नान गर, अनि चन्द्रावतीको दहमा स्नान गर। हे छोरा ! प्रभातीर्थमा स्नान गर, त्यसपछि सुन्दर सरस्वतीको तीर्थमा स्नान गर। अनि व्याघ्रतीर्थ र त्यसपछि धर्मगङ्गाको जलमा स्नान गर। कनखल तीर्थमा स्नान गरेर फेरि मीनतीर्थमा स्नान गर। नवधाराको जलमा स्नान गरेर शक्रदहमा स्नान गर ॥४६–५०॥

रुद्रमतीको उत्पत्तिस्थलमा स्नान गर। त्यसपछि हे छोरा ! उशीरबीज नाम गरेको पवित्र तीर्थमा स्नान गर। जसले लुण्ठिकाश्रमको प्रारम्भमा स्नान गर्छ त्यसले दशवटा गाई दान गरेको फललाई प्राप्त गरेर इन्द्रलोक जान पाउँछ। सिद्धरसा नदीको जलमा स्नान गरेर स्कन्दतीर्थमा स्नान गर। हे प्रिय ! त्यसपछि विष्णुपदी उत्पन्न भएको स्थलमा गएर स्नान गर। नारसिंही नदीमा स्नान गरेर ज्येष्ठिला नदीको उद्गम स्थलमा स्नान गर। त्यसपछि धर्मनदीको उत्पत्ति भएको स्थलमा गएर भक्तिपूर्वक स्नान गर ॥५१–५४॥

---

१३. सुगवां कोटिफलं लभेत्, इति न.सं.पु.पाठः।
१४. सुत नम्य च, इति न.सं.पु.पाठः।
१५. चित्रह्रदे जलाप्लुत्य चन्द्रवत्याश्च दर्पक, इति न.सं.पु.पाठः।
१६. सरस्वत्याञ्च, इति न.सं.पु.पाठः।

वाराहीसम्भवे स्नात्वा मृगेन्द्राद्रिः प्रणम्यताम्। वाग्वतीप्रभवे स्नाहि भक्त्या प्रणम्य वाग्वतीम् ॥५५॥
कोटिजन्मार्जितैः पापैः स्नाता मुक्तो न संशयः। वाग्वत्यां स्नानमात्रेण मद्देहोऽसौ भवेत्सुत ॥५६॥
अत्र मुञ्जवतः कूटे त्वं भस्मसात्कृतः पुरा। नेत्राग्निहेतिभिर्येन गौरीसमागमे सुत ॥५७॥
नमस्कुरु महादेव[१७] प्रद्युम्न ! भक्तितो ह्ययम्। लिङ्गमूर्त्तिधरः शम्भुः कार्यन्ते सफलं यतः ॥५८॥
प्रणम्यतां मुनिश्रेष्ठो दुर्वासा हि तपोधनः। सिद्धाः सप्तर्षयो भक्त्या संस्नाय वाग्वतीजले ॥५९॥

स्कन्द उवाच

आकर्ण्य वचनं भक्त्या प्रद्युम्नो हि पितुस्तदा। वाग्वतीप्रभवे स्नात्वा वन्दयामास तांश्च तान् ॥६०॥

इत्थं हरिश्चाप्लवयन् स्वपुत्रान् तीर्थानि चोद्दिश्य सुतोयवन्ति[१८]।
हेमाद्रिकुक्षिं भ्रमयन्मुहुर्वै कामं ह्यवात्सीद्धि निशां सपुत्रः ॥६१॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये प्रद्युम्नोत्तरे प्रद्युम्नतीर्थयात्रा नाम द्विसप्तत्युत्तरशततमोऽध्यायः ॥१७२॥

---

हे छोरा ! वाराही नदीको उत्पत्तिस्थलमा स्नान गरेर मृगेन्द्र नाम गरेको पर्वतलाई प्रणाम गर। वाग्वतीलाई नमस्कार गरेर वाग्वतीको उत्पत्तिस्थलमा भक्तिपूर्वक स्नान गर। वाग्वतीमा स्नान गर्ने व्यक्ति करोडौं जुनीमा गरेका पापबाट मुक्त हुन्छ र मेरै शरीर बन्न पुग्छ। यसमा सन्देह छैन। मुञ्जवान् नाम गरेको यस पर्वतको शिखरमा अघि पार्वतीसँगको समागमको प्रसङ्गमा भगवान् शङ्करले आफ्ना आँखाको ज्वालाले तिमीलाई भस्म तुल्याउनुभएको थियो। हे प्रद्युम्न ! भक्तिपूर्वक लिङ्गमूर्तिधारी ती महादेवलाई प्रणाम गर। उहाँले तिम्रा सबै कामना पूर्ण गरिदिनुहुनेछ। वाग्वतीको जलमा स्नान गरेर भक्तिपूर्वक तपस्याका धनी मुनिश्रेष्ठ दुर्वासा ऋषि, सिद्ध र सप्तर्षिहरूलाई भक्तिपूर्वक प्रणाम गर ॥५५-५९॥

कार्तिक स्वामीले भन्नुभयो - आफ्ना पिता श्रीकृष्णको यस्तो कुरा सुनेर प्रद्युम्नले भक्तिपूर्वक वाग्वतीको जलमा स्नान गरे र ती दुर्वासा, सिद्ध र सप्तर्षिलाई नमस्कार गरे। हे अगस्त्य मुनि ! यसरी श्रीकृष्णले तीर्थहरूको जलमा छोराहरूलाई स्नान गराउनुभयो। हिमालयको काखमा घुमाउँदै छोराहरूलाई साथमा लिएर उहाँ एकरात त्यहाँ बस्नुभयो ॥६०-६१॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्ड नेपालमाहात्म्यको प्रद्युम्नोत्तरमा श्रीकृष्णका साथमा प्रद्युम्नको तीर्थयात्रानामक एकसय बहत्तरौं अध्याय पूरा भयो।

---

१७. प्रणम्यतां महादेवः, इति न.सं.पु.पाठः।
१८. मुने सुतोये, इति न.सं.पु.पाठः।

# त्रिसप्तत्युत्तरशततमोऽध्यायः

प्रद्युम्ननारदसंवादः

स्कन्द उवाच

द्वादश्याञ्चैत्रकृष्णस्य प्रातः सस्नौ सुतैः समम्। तन्निशायां व्यतीतायां वाग्वतीप्रभवे हरिः ॥१॥
नारदः प्रययौ तत्र वीणां प्रवादयन् मुदा। तुष्टाव स्तुतिभिः कृष्णं व्याचष्ट वचनं पुनः ॥२॥

नारद उवाच

भगवन् ! पुण्डरीकाक्ष ! सूर्यकेतुर्नराधिपः। बहुकालं स्थितस्तत्र स्वर्गे गमनकाङ्क्षया ॥३॥
सा राज्ञो दुहिता देवी प्रद्युम्नाय प्रकल्पिता। नाम्ना चन्द्रवती ख्याता चन्द्रबिम्बनिभानना ॥४॥
तां हर्तुमीहते पापो महेन्द्रदमनोऽसुरः। सम्मोहादेव दुर्बुद्धिरप्रदानान्महीपतेः ॥५॥
अतः पूर्णेन्दुवक्त्रां तां बालां बालमृगेक्षणाम्। रूपातिशालिनीं कन्यां विवाहविधिना भज[1] ॥६॥
बहुकालं निरुद्धाङ्गी चन्दनाद्रिसुमालया[2]। वाग्वतीयं सरिच्छ्रेष्ठा गङ्गां यातुं समीहते ॥७॥
आस्ते प्रभावती नाम राजपुत्री च सुन्दरी। प्रद्युम्नं काङ्क्षते नित्यं पतित्वेन तपोबलात् ॥८॥
मधुस्त्वं पूर्वदेहेन कामश्चैव त्वमेव हि। या माधवी मधोर्भार्या सैषा देवी प्रभावती ॥९॥
तस्माद्विकल्पमुत्सृज्य स्वीकुरु तां[3] त्वमादरात्। सुप्रभानगरे तत्र चातो नैर्ऋत्यदेशतः ॥१०॥
अद्यैका रजनी चात्र स्थातव्या काम ! शेखरे। भवताऽपि च कर्तव्यं दौलाद्रौ गमनं विभो[4] ॥११॥

कृष्ण उवाच

अवश्यमेव गन्तव्यं दोलाद्रिशिखरं मुने। तिष्ठ पुत्रात्र वै सार्द्धं भ्रातृभिः सह पुण्यके ॥१२॥
अवश्यमेव कामोऽयं पाणिग्रहं करिष्यति। राजपुत्र्योस्तयोर्दान्त ! बलिपुत्रे हते सति ॥१३॥

---

## अध्याय - १७३

### प्रद्युम्न र नारदको भेटघाट तथा संवाद

कार्तिक स्वामीले भन्नुभयो - रात बितेपछि चैत्र कृष्ण द्वादशीका दिन बिहान छोराहरूका साथै भगवान् कृष्णले वाग्वतीको उद्गमस्थलमा स्नान गर्नुभयो। त्यसैबेला प्रसन्न भएर वीणा बजाउँदै नारदमुनि त्यहाँ आउनुभयो र कृष्णको स्तुति गर्न लाग्नुभयो ॥१-२॥

नारदजीले भन्नुभयो - हे भगवन् ! हे पुण्डरीकाक्ष ! स्वर्ग जाने कामना गरेर धेरै समयसम्म सूर्यकेतु नाम गरेका राजा यहाँ बसेका छन्। चन्द्रमाको बिम्बजस्तै मुख भएकी चन्द्रवती नाम गरेकी आफ्नी छोरी प्रद्युम्नलाई दिने ती राजाको विचार छ। राजाले नदिएको हुँदा ती कन्यालाई मोहित तुल्याएर दुर्बुद्धि इन्द्रदमन नाम गरेको राक्षस तिनलाई अपहरण गर्न चाहन्छ। यसैले बालक मृगको जस्तो आँखा भएकी, पूर्ण चन्द्रमाको जस्तो मुख भएकी, अत्यन्त राम्री ती कन्यालाई हे प्रद्युम्न ! विवाह गर्नुहोस् ॥३-६॥

हे भगवन् ! धेरै समयसम्म चन्दनगिरिको पहाडले छेकिएकी यी वाग्वती गङ्गामा गएर मिसिन चाहन्छिन्। बलिराजाकी सुन्दरी छोरी अर्की प्रभावती नाम गरेकी कन्या छन्। उनी तपस्याको बलले प्रद्युम्नलाई सधैँ पतिका रूपमा वरण गर्न चाहन्छिन्। तपाईं अघिल्लो जुनीमा मधु हुनुहुन्थ्यो। कामदेव भनेको पनि तपाईं नै हो। जुन मधुकी पत्नी माधवी थिइन्, तिनै अहिले प्रभावती भएर जन्मिएकी छन्। यसैले यहाँबाट नैर्ऋत्यतिर पर्ने सुप्रभा नाम गरेको शहरमा गएर शङ्का नगरीकन श्रद्धापूर्वक तिनलाई ग्रहण गर्नुहोस्। हे कामदेव ! यस पर्वतको शिखरमा आज एक रात विश्राम गर्नुहोस्। हे कृष्ण ! हजुरचाँहि दोलाचल पर्वततिर जानुहोस् ॥७-११॥

कृष्णले भन्नुभयो - हे नारद ! दोलाद्रिपर्वतको शिखरमा त जानैपर्छ। हे बाबु प्रद्युम्न ! भाइहरूका साथ यसै पवित्र स्थलमा तिमी बस। अवश्य पनि बलिका छोरालाई मारेर प्रद्युम्नले ती दुईवटी राजपुत्रीसित विवाह गर्नेछन् ॥१२-१३॥

---

१. विवाहः कृयतां स्मरम्, इति न.सं.पु.पाठः।
२. चन्दनागिरिमालय, इति न.सं.पु.पाठः।
३. प्रतिगृह्ण, इति न.सं.पु.पाठः।
४. भवतापि विभो कृष्ण ! दोलाद्रौ गमनं पुनः, इति न.सं.पु.पाठः।

गमिष्यति ह्यसौ राजा सूर्यकेतुश्च नारद। शिवपुरं परं धाम[५] परिवारैः समं पुनः ॥१४॥
मोक्ष्यामि[६] वाग्वतीं कामं चक्रेणानेन वर्चसा। भित्त्वा सेतुं महद्बन्धं गङ्गां यास्यति वाग्वती ॥१५॥

स्कन्द उवाच

इत्युक्त्वा प्रययौ कृष्णो दोलाद्रिं गरुडध्वजः। उपदेशं समुद्दिश्य पुत्रायागस्त्य ! साम्प्रतम् ॥१६॥
अवात्सीत् स च कन्दर्पो भ्रातृभिः सह कुम्भज। मुञ्जवच्छेखरे रम्ये फलैः पुष्पैश्च सङ्कुले[७] ॥१७॥

प्रातः स्नातः स मुनिवचनान्मुञ्जवच्छेखरेऽसौ
भक्त्या दध्यौ निशि गिरिसुतां वाग्वतीसम्भवे वै।
अभ्यर्च्यार्यां दितिसुतसुतां लब्धुकामो हि काम-
स्तद्वाञ्छां सा घटभव ददौ सिद्धकामोऽप्यभूत्स ॥१८॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये प्रद्युम्नोत्तरे नारदसमागमो नाम त्रिसप्तत्युत्तरशततमोऽध्यायः ॥१७३॥

---

हे नारद ! यी सूर्यकेतु राजा पनि अत्यन्त सुखदायक शिवजीको लोकमा परिवारसहित जानेछन्। यो चक्रको तेजले वाग्वतीको पनि अवश्य मुक्ति हुनेछ। यो ठूलो बाँध लगाएको पुललाई भेदन गरेर वाग्वती गङ्गामा जानेछिन् ॥१४-१५॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य ! यति भनी छोराहरूलाई उपदेश दिएर श्रीकृष्ण गरुडमा चढी दोलाचल जानुभयो। हे अगस्त्य मुनि ! प्रद्युम्न आफ्ना भाइहरूलाई साथमा लिएर फलफूलले भरिपूर्ण भएको मुञ्जवान् नाम गरेको पर्वतको शिखरमा बस्नुभयो ॥१६-१७॥

हे अगस्त्य मुनि ! नारदको वचनअनुसार प्रद्युम्नले बिहान मुञ्जवान् पर्वतको शिखरमा स्नान गरे। राति त्यसै ठाउँमा प्रभावती प्राप्तिको कामना गरेर पार्वतीको ध्यान र पूजा गरे। पार्वतीले तिनको इच्छा पूर्ण गरिदिनुभयो, उनको कामना सिद्ध भयो ॥१८॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्ड नेपालमाहात्म्यको प्रद्युम्नोत्तरमा श्रीकृष्णका साथमा नारदको समागम र वार्तानामक एकसय त्रिहत्तरौं अध्याय पूरा भयो।

---

५. महत्सौख्यम्, इति न.सं.पु.पाठः। ६. मोक्ष्यसे, इति न.सं.पु.पाठः।
७. व्यक्तं पुष्पफलं प्रकाशयन्, इति न.सं.पु.पाठः।

# चतुःसप्तत्युत्तरशततमोऽध्यायः

## शङ्खासुरादिदैत्यानां मोहितावस्था

स्कन्द उवाच

चैतसितत्रयोदश्यां स्वप्नं दृष्टवती निशि[1] । मुने ब्राह्ममुहूर्त्ते सा प्रभावतीति तं शृणु ॥१॥
प्रद्युम्नेन समं कामं कामयामास वै सुखम् । व्यतीतायाञ्च निद्रायां रुरोद सा भृशं मुहुः ॥२॥
सखी पप्रच्छ तां हंसी तन्मुहूर्त्ते तदा मुहुः । तस्याः क्रन्दनमाकर्ण्य करुणोदितसुस्वरम् ॥३॥

हंस्युवाच

कस्माद्रोदिषि कल्याणि कुतो भयं तवागतम्[2] । अस्मिन् ब्राह्मे मुहूर्त्ते त्वं मा रोदिहि[3] प्रभावति ॥४॥
अथवा त्वत्प्रियो दृष्टो स्वप्ने यः काङ्क्षितस्त्वया[4] । वद तन्मे यथातथ्यं प्रतीकारं करोम्यहम् ॥५॥

प्रभावत्युवाच

मा पृच्छ्यतां सखे हंसि ! मम स्वप्नः[5] त्वयाऽधुना । दैवेन वञ्चिताया मे चाभागिन्या निरन्तरम् ॥६॥
इदानीं किमहं वच्मि स्वप्नदृष्टो मया हि यः । ब्रीडायुक्तं वचो देवि ! तथापि वच्म्यहं शृणु ॥७॥
अपूर्वः सुन्दरः कान्तो दृष्टः स्वप्ने मयाऽधुना । प्रद्युम्नाख्यो हरेः पुत्रो बालार्कसदृशप्रभः ॥८॥
स मां वै कामयामास नानाक्रीडाविधानकैः । कामरूपो भवन् साक्षाच्छश्वत्प्रातोषयच्च माम् ॥९॥
मां विहायाऽधुना हंसि ! निद्रान्ते स गतो बहिः । मत्प्राणाँश्च समादाय स्यान्मे द्वितीयजीवनम् ॥१०॥
कथं जीव्यामहं हंसि विना प्राणं महीतले[6] । पण्डितासि वदोपायं येन प्राणान् प्रधारये ॥११॥

---

## अध्याय – १७४

### शङ्खासुर आदि दैत्यहरूको मोहित अवस्था

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! चैत्रशुक्ल त्रयोदशीका दिन ब्राह्ममुहूर्तमा ती राजकुमारी प्रभावतीले देखेको सपनाका बारेमा बताउँछु, सुन्नुहोस् । प्रभावतीले त्यस सपनामा प्रद्युम्नका साथ खूबसित कामक्रीडा गरिन् । निद्राबाट बिउँझिएपछि उनी खूबसित रोइन् । उनकी सङ्गिनी हंसीले त्यसबेला तिनको करुणक्रन्दनमय मधुर स्वर सुनेर त्यस बारेमा बारम्बार प्रभावतीसँग सोधिन् ॥१–३॥

हंसीले भनिन् – हे कल्याणी ! तिमी किन रुन्छ्यौ ? तिमीलाई कहाँबाट डर पैदा भयो ? हे प्रभावती ! यो ब्राह्ममुहूर्त हो । यसबेला रुनुहुँदैन, नरोऊ । अथवा हे सखी ! तिमीले स्वप्नमा आफूले चाहेको प्रियलाई पो देख्यौ कि ? मलाई जस्ताको तस्तै बताइदेऊ, म त्यसको उपाय गर्छु ॥४–५॥

प्रभावतीले भनिन् – हे सङ्गिनी हंसी ! सधैँ अभागिनीका रूपमा रहेकी, दैवद्वारा वञ्चित मेरो सपनाका बारेमा अहिले नसोध । स्वप्नमा देखेको कुरा अहिले म तिमीलाई के भनौँ ? लाजलाग्दो कुरा छ तैपनि म भन्छु, सुन । मैले अहिले स्वप्नमा भर्खर उदाएका सूर्यको जस्तो तेज भएको यसभन्दा अघि कहिल्यै नदेखेको भगवान् कृष्णको पुत्र प्रद्युम्नलाई देखेँ । उनले मसित विभिन्न किसिमका क्रीडा गरेर साक्षात् कामदेवकै रूप धारण गरी मलाई बारम्बार सन्तुष्टि दिलाए । हे हंसी ! बिउँझिने बेलामा तिनले मलाई छोडेर मेरो प्राण लिई अहिले बाहिर गए । मेरो दोस्रो जीवन भयो । हे हंसी ! मेरा प्राणसमान ती प्रद्युम्नले मलाई छाडी गएपछि म पृथिवीमा कसरी बाँचुली ? तिमी पण्डित छ्यौ, जे गर्दा म बाँच्न सक्छु, त्यो उपाय बताऊ ॥६–११॥

---

१. ततो लभन्निशि, इति न.सं.पु.पाठः ।
२. क्व भयमागतन्तव, इति न.सं.पु.पाठः ।
३. रोदय, इति न.सं.पु.पाठः ।
४. अथवा त्वत्प्रियं दृष्टं स्वप्ने तत्काङ्क्षितं सखि, इति न.सं.पु.पाठः ।
५. मत्स्वप्नं माम्, इति न.सं.पु.पाठः ।
६. प्राणान्ते तेन वै विना, इति न.सं.पु.पाठः ।

हंस्युवाच

दुःखं मा वह हे देवि ![७] स्वप्ने प्रेक्ष्य प्रियाप्रियम्। पश्यन्ति निशि लोकाश्च स्वप्नाँश्च विविधान् पुनः ॥१२॥
शृणु देवि प्रवक्ष्यामि स्वप्नानाञ्च शुभाशुभम्। यत् यत् प्रेक्ष्य नराः स्वप्ने प्रलभन्ते शुभाशुभम् ॥१३॥
स्वप्नस्तु प्रथमे यामे वर्षेण फलदायकः[८]। द्वितीये चाष्टभिर्मासैस्त्रिभिर्मासैस्तृतीयके ॥१४॥
चतुर्थे चार्धमासेन लभ्यते[९] स्वप्नजं फलम्। अरुणोदयवेलायां दशाहेन फलं भवेत् ॥१५॥
यदि स्वप्स्यति स्वप्नान्ते स्वप्नो भवति निष्फलः। दृष्टे स्वप्ने च हातव्या निद्रा सञ्चरणं हितम्[१०] ॥१६॥
भवत्या सोऽधुना दृष्टः काले वै चारुणोदये[११]। भविष्यति फलं रम्यं[१२] दशाहाभ्यन्तरे दिने ॥१७॥
यदि नात्र प्रभादेवी कान्तोऽसावागमिष्यति। उपायं तत्करिष्यामि कातरताञ्च मा व्रज ॥१८॥
देवीमन्त्रोपनीताहं दुर्वाससा महर्षिणा। मम भक्त्या सुतुष्टेन[१३] वाग्वतीप्रभवे गिरौ ॥१९॥
करिष्यामि ह्युपायं तन्मन्त्रं गुरूप्रसादतः। श्वः पश्यसि प्रभादेवि स्वप्नदृष्टं प्रियं जनम्[१४] ॥२०॥

स्कन्द उवाच

एवं सम्बोध्य सा हंसी प्रातःकाले प्रभावतीम्। प्रद्युम्नागमनं द्रष्टुमुत्सुका सा बभूव हि ॥२१॥
तत्र लब्धवरो मारो भवान्या हि प्रसादतः। मुञ्जवच्छेखरेऽगस्त्य ! सिद्धमनोरथोऽभवत् ॥२२॥
चक्रुर्विमर्शनं तत्र ते प्रद्युम्नपुरःसराः। हरणाय प्रभावत्याः प्रदधुर्नटवेषकम् ॥२३॥

---

हंसीले भनिन् – हे प्रभादेवी ! स्वप्नमा देखिएको प्रिय र अप्रिय वस्तुबाट सुखी र दुःखी हुनुहुँदैन, रातमा मानिसहरू अनेक किसिमका सपनाहरू देख्छन्। हे देवी ! सुन, स्वप्नको शुभ र अशुभ फल म बतउँछु, जसलाई देखेर मानिसहरू शुभ तथा अशुभ फल पाउँछन्। पहिलो प्रहरमा देखिएको स्वप्नले एक वर्षमा फल दिन्छ, दोस्रो प्रहरमा देखेको स्वप्नले आठ महिनामा फल दिन्छ, तेस्रो प्रहरमा देखिएको स्वप्नले तीन महिनामा फल दिन्छ। चौथो प्रहरमा देखेको स्वप्नले आधा महिनामा फल दिन्छ, यसमा शङ्का छैन। अरुणोदय अथवा उज्यालो हुने बेलामा देखेको स्वप्नले दशै दिनका दिन फल दिन्छ। स्वप्न देखेपछि सुत्यो भने स्वप्न निष्फल हुन्छ। त्यसैले सपना देखेपछि मानिसले सकेसम्म सुत्नुहुँदैन, बरु विश्राम गर्नुपर्छ र उज्यालो नभएसम्म हिँडिरहनुपर्छ, यसो गरेमा त्यसले हित गर्दछ ॥१२–१६॥

तिमीले जुन यो अरुणोदयको बेलामा सपना देख्यौ त्यस सपनाको फल दश दिनभित्रै अवश्य प्राप्त हुनेछ। हे प्रभावती ! यदि तिम्रा यी पति आएनन् भने तिनलाई ल्याउने उपाय म गरुँला, नआत्तिई बस। मेरो भक्तिबाट प्रसन्न भएका दुर्वासा ऋषिले वाग्द्वारपर्वतमा मलाई देवीको मन्त्र दिनुभएको छ। म गुरुको कृपा अनुसार उपाय रच्दछु, मन्त्र गर्दछु। हे प्रभावती ! तिमीले जसलाई सपनामा देखेकी थियौ, त्यसलाई भोलि देख्न पाउनेछ्यौ ॥१७–२०॥

कार्तिक स्वामीले भन्नुभयो – यसरी हंसीले प्रभावतीलाई बिहान सम्झाइन्। त्यसपछि उनी प्रद्युम्न आएको हेर्न उत्सुक भइन्। भवानीबाट वर पाएका प्रद्युम्नले उहाँको अनुकम्पा अनुसार मुञ्जवान् नाम गरेको पर्वतमा मनोरथ सिद्ध गरे। त्यहाँ प्रद्युम्न आदि यादवहरूले परस्परमा छलफल गरेर प्रभावतीलाई अपहरण गर्नका लागि नटुवाको भेष धारण गरे ॥२१–२३॥

---

७. मा दुःखय प्रभादेवि, इति न.सं.पु.पाठः।
८. वर्षेणापि फलं ददेत्, इति न.सं.पु.पाठः।
९. लभ्यते, इति न.सं.पु.पाठः।
१०. श्रुत्वा विश्राम्यते स्वप्ने यावत्संचरते नरः, इति न.सं.पु.पाठः।
११. भवत्या योऽधुना दृष्टः कालोऽस्मिन्नरुणोदये, इति न.सं.पु.पाठः।
१२. लभिष्यसि ह्यवश्यन्तम्, इति न.सं.पु.पाठः।
१३. मम भक्तिप्रतोषेण, इति न.सं.पु.पाठः।
१४. यं स्वप्ने प्रेक्षितं हि तम्, इति न.सं.पु.पाठः।

प्रययुर्यादवा वीराः सुप्रभानगरं द्रुतम् । मायामोहकशैलूषवेषवन्तो हि चैत्रके[१५] ॥२४॥
प्रचक्रुर्दानवास्तेषां सत्कारं प्रेमतो भृशम् । स्वं देशमागतान् मत्वा तान्प्रेक्षितुं हि नर्तकान् ॥२५॥
मधोः शुक्लचतुर्दश्यां तत्र प्राप्ता हि नर्तकाः । मधौ पुष्पफलैः पूर्णे तेऽभूवन् क्षुब्धमानसाः[१६] ॥२६॥
ततोऽवादीत्प्रभावत्यै हंसी योगवती च ताम् । आलोकनाय नृत्यानां प्रद्युम्नागमनं तथा ॥२७॥

हंस्युवाच

यो दृष्टः खलु कल्याणि ! सुस्वप्ने पुरुषस्त्वया । समायाति स्वयं सोऽयं पश्यतां गोपुरान्तरे ॥२८॥
नटरूपं समास्थाय प्रद्युम्नोऽत्राङ्गणे हि सः । नर्तिष्यति भृशं देवि पश्य पूर्णमनोरथे ! ॥२९॥

प्रभावत्युवाच

भवितास्मि सखे हंसि ! त्वत्कृतैः पूर्णमानसा । समागच्छति कान्तोऽसौ न मृषा त्वद्वचः कदा ॥३०॥
त्वयाऽहं सहिता कान्तं द्रक्ष्यामि स्वप्नसुन्दरम्[१७] । वसन्ती[१८] हर्म्यके चात्र तिष्ठ मत्प्राणदेशिके ॥३१॥

स्कन्द उवाच

इत्युक्त्वा सहसा तस्थौ हंस्या सह प्रभावती । प्रद्रष्टुं कैशवं नृत्यं हर्म्यस्योपरि वै मुदा ॥३२॥
ततस्ते नरीनृत्यन्त यादवा हर्षिता[१९] भृशम् । स्त्रीपुंसां दधतो बेषान् मायाविनो हि मायया ॥३३॥
सुखेनानरीनृत्यन्त दशावतारनृत्यकम्[२०] । यद्यच्चरित्रकं विष्णोस्तत्तद्यशांसि ते जगुः[२१] ॥३४॥
मुमुदिरे भृशं दैत्याः समालोक्य प्रनर्तकान् । ऋक्षमर्कटरूपांश्च रामलक्ष्मणसेवकान् ॥३५॥

---

चैत्रमहिनामा मायालाई मुग्ध तुल्याउने वीर यादवहरू नटुवाको भेष धारण गरेर तुरुन्त सुप्रभा नगरमा गए । त्यसपछि दानवहरूले आफ्नो देशमा आएका हुन् भन्ने ठानेर प्रेमपूर्वक नटुवाहरूको सत्कार गरे। चैत्रशुक्ल चतुर्दशीका दिन ती नटुवाहरू त्यहाँ पुगे। फलफूलले परिपूर्ण भएको त्यस ठाउँमा उनीहरूको मन अत्यन्त रमायो। त्यसपछि हंसी र योगवतीले प्रद्युम्न आएको घटना बताउँदै नाच हेर्नका लागि प्रभावतीलाई अनुरोध गरे ॥२४-२७॥

हंसीले भनिन् - हे कल्याणी ! स्वप्नमा जुन पुरुषलाई तपाईंले देख्नुभएको थियो, त्यही पुरुष शहरको ढोकामा आउँदै छ, हेर्नुहोस्। यस दरबारको प्राङ्गणमा प्रद्युम्न नटुवाको रूप लिएर बाम्बार नृत्य गर्नेछन्। हे मनोरथ पूर्ण भएकी देवी ! तपाईं यो दृश्य मजाले हेर्नुहोस् ॥२८-२९॥

प्रभावतीले भनिन् - हे हंसी ! तिमीप्रति म अत्यन्त प्रसन्न भएकी छु। पति आउँदै हुनुहुन्छ, तिम्रो वचन कहिल्यै पनि झुटो हुँदैन। हे मेरी प्राणप्यारी ! तिमी र म सँगै महलमा बसेर त्यहाँ आएका पतिलाई हेरौं ॥३०-३१॥

कार्तिक स्वामीले भन्नुभयो - यति भनेपछि तुरुन्त हंसीलाई साथमा लिएर प्रभावती महलमाथिबाटै प्रद्युम्नको नृत्य हेर्नका लागि त्यहाँ उभिइन्। त्यसपछि त्यहाँ यादवहरूले स्त्री र पुरुषजातिको मायावी शरीरलाई धारण गरेर प्रसन्नताका साथ नाचे। जति भगवान् विष्णुका चरित्रहरू थिए, उहाँका कीर्तिको गान गर्दै दश अवतार लिएर यादवहरूले नृत्य देखाए। राम र लक्ष्मणका सेवक बनेका भालु र बाँदरको रूप लिई नाच्ने नटुवाहरूलाई देखेर दैत्यहरू अत्यन्त प्रसन्न भए ॥३२-३५॥

---

१५. नटवेषधराः सम्यक् मायाविमोहिचैत्रिके, इति न.सं.पु.पाठः ।
१६. पुष्पफलोद्भवे पूर्णे चुक्षुभिरे मनांसि तत, इति न.सं.पु.पाठः ।
१७. द्रक्ष्यामहे तत्र तम्, इति न.सं.पु.पाठः ।
१८. प्रवसन्, इति न.सं.पु.पाठः ।
१९. यादवास्तत्र नरीनृत्यन्मुदा, इति न.सं.पु.पाठः ।
२०. दशावतारमुद्दिश्य नरीनृत्यन् हि यादवाः, इति न.सं.पु.पाठः ।
२१. गीतयन्, इति न.सं.पु.पाठः ।

मुमुहुर्दानवा भूयो नर्तकानां भृशं मुने। नव रसान् समालोक्य बहुचेष्टाप्रचेष्टितान् ॥३६॥
बालवृद्धा युवानश्च दानवा योषितस्तथा। युद्धानि तानि सम्प्रेक्ष्य[२२] कपीनां विस्मयं गताः ॥३७॥
उत्थायोत्थाय नाट्यस्य विशेषेण पुनः पुनः। ददुर्वासांसि सन्तुष्टा ग्रैवेयवलयानि च ॥३८॥
हारान्मनोरमांस्तेभ्यो हैमवैदूर्यभूषितान्। ददुरर्थान् ततस्तत्र श्लोकैस्ते तुष्टुवुर्नटाः ॥३९॥
एवं प्रनृत्यैश्च सहानुजोऽसौ तान्मोहयन् तत्खलु मन्मथोऽपि।
स्त्रीनृत्यमुग्धो भवतीह लोको न मोहयेत् सा कथमस्य माया[२३] ॥४०॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये प्रद्युम्नोत्तरे दैत्यमोहनन्नाम
चतुःसप्तत्युत्तरशततमोऽध्यायः ॥१७४॥

---

हे अगस्त्य मुनि ! विभिन्न चेष्टाहरूको प्रदर्शन गर्ने, नवै रसले परिपूर्ण भएका तिनीहरूको क्रियाकलापलाई देखेर दानवहरू फेरि पनि अत्यन्त हर्षित भए। बालक, बूढा तथा युवक दानवहरू र तिनका स्त्रीहरू बाँदरको त्यस्तो युद्धलाई देखेर अत्यन्त चकित परे ॥३६-३७॥

नाटकको विशेषताले गर्दा प्रसन्न भएका ती राक्षस एवं राक्षसीहरूले उनीहरूलाई लुगा र पन्नाका बालाहरू उठी उठी प्रदान गरे। सुन र वैदूर्यमणिले युक्त भएका सुन्दर हारहरू र सम्पत्ति दिएपछि नटुवाहरूले पनि मीठो श्लोक हालेर तिनीहरूको स्तुति गरे ॥३८-३९॥

यसरी भाइसमेत भएर प्रद्युम्नले विभिन्न नाचहरू नाचेर तिनीहरूलाई मोहित तुल्याउनुभयो। स्त्रीहरूको नाचले त संसार भुलेको हुन्छ भने मायाका खेलले सबै कसरी मोहित हुँदैनन् ? ॥३९॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्ड नेपालमाहात्म्यको प्रद्युम्नोत्तरमा नटुवावेषधारी प्रद्युम्नद्वारा प्रभावतीको दरबारमा नृत्यप्रदर्शननामक
एकसय चौहत्तरौं अध्याय पूरा भयो।

---

२२. युद्धांश्च तादृशान्प्रेक्ष्य, इति न.सं.पु.पाठः। 	२३. मायाप्रभं तन्न कथं हि मोहम्, इति न.सं.पु.पाठः।

# पञ्चसप्तत्युत्तरशततमोऽध्यायः

प्रभावतीहरणप्रसङ्गः

स्कन्द उवाच

दूरादपि प्रभावत्या चित्तं सम्मथ्य मन्मथः। साचिविलोकनोद्भूतैः पञ्चबाणैर्जघान ताम् ॥१॥
रूपवन्तं गुणोपेतं प्रद्युम्नं नर्तकं मुहुः। मायाविनं महावीरं प्रेक्ष्याशु विह्वलाऽभवत् ॥२॥
लोलचित्तं समास्थाय तत्क्षणाद्धि प्रभावती। मन्मथोन्मथितस्वान्ता व्याचष्ट वचनं सखीम् ॥३॥

प्रभावत्युवाच

दह्यते सखि मे कायः कामस्यैव शराग्निभिः। शुष्यते वदनं कण्ठो मानसं परिमथ्यते[1] ॥४॥
द्वौ व्याधौ मां हतः शश्वत् कामेक्षणनिशाकरौ। असह्यः शर एकोऽपि बहून् शरान् कथं क्षमे ॥५॥
अहो धूमायतेऽङ्गे श्रीर्दग्धाया मे सखि प्रिये। कामामृतेन शीतेन सखि सिञ्च[2] प्रजीवय ॥६॥
यदि न कुरुषे हंसि ! शल्यार्तायाः प्रियौषधम्[3]। मत्प्राणान् त्वयि संन्यस्य व्रजामि यममन्दिरम् ॥७॥

हंस्युवाच

मा मा प्रधर्षयार्ये ! त्वञ्चपलेनैव चेतसा। उपायं तत्करिष्यामि हंसी तां समबोधयत्[4] ॥८॥
इत्युक्त्वा प्रययौ हंसि यत्र कामः प्रनर्तकः। भ्रमररूपमास्थाय हर्म्यस्योपरितो द्रुतम् ॥९॥
कामस्योपरितस्तत्र भ्रमति स्माशु भृङ्गिणी। तत्कर्णे चावसत्क्षिप्रं ददंश सस्वरञ्च[5] तम् ॥१०॥
कामश्चाप्यभवत्सद्यो भृङ्गरूपो मुने तदा। भ्रमति स्म तया सार्द्धं विहाय व्योम्नि नर्तकान्[6] ॥११॥

---

## अध्याय – १७५

प्रद्युम्नद्वारा प्रभावतीको हरण

कार्तिक स्वामीले भन्नुभयो – नृत्य हेरेपछि प्रभावतीको चित्तलाई यढैबाट मथन गरेर कामदेवले पाँचै बाणले हिर्काए ॥१॥ त्यसपछि रूप र गुणले युक्त भएका बटुको रूप धारण गर्ने मायावी ती महावीरलाई देखेर प्रभावती अत्यन्त विह्वल भइन् ॥२॥ चञ्चल चित्त बनाएर तुरुन्त प्रभावतीले कामवासनाले पीडित हुँदै आफ्नी सखीसित भनिन् ॥३॥

प्रभावतीले भनिन् – हे सखी ! कामदेवको बाणरूपी अग्निले मेरो शरीरलाई डढाइराखेको छ, मेरो मुख सुकिरहेको छ, मेरो मन अत्यन्त मथिएको छ। कामदेव र चन्द्रमा रूपी दुई व्याधाले मलाई हिर्काइरहेका छन्। एउटा पनि बाण सहन सकिने खालको छैन। एकै पटक धेरै बाणहरूको प्रहार म कसरी सहुँ ? हे प्रिय सखी ! कामाग्निले डढ्न लागेको मेरो शरीरको सौन्दर्यमा धुँवा पुत्पुताउन लागेको छ। कामवासना तृप्तिरूपी अमृतले मलाई सेचन गर र बचाऊ। हे हंसी ! कामदेवको बाणबाट लागेको घाउको औषधि यदि तिमी गर्दिनौ भने प्राण तिमीलाई नै दिएर म यमराजको घरमा जान्छु ॥४–७॥

हंसीले भनिन् – हे प्रभावती ! चञ्चल चित्त बनाएर तिमी नहडबडाउ। त्यो उपाय म अवश्य गर्नेछु। यसरी हंसीले प्रभावतीलाई सम्झाइन्। यति भनेर हंसी जहाँ कामदेव नाचिरहका थिए, त्यसै ठाउँमा भ्रमराको रूप लिएर दरबारको कौशीबाट तुरुन्त गइन्। हंसी भ्रमराको रूप लिएर कामदेवको वरिपरि घुमिन्। कानमा बसेर मीठो स्वर निकाल्दै प्रद्युम्नलाई टोकिन्। तुरुन्तै कामदेव पनि भ्रमराका रूपमा परिणत भए। नटुवाहरूलाई त्यहीँ छोडेर हंसीका साथै आकाशमा घुम्न थाले ॥८–११॥

---

१. परिशुष्य मुखं काण्डं मनो मे परिमन्थितम्, इति न.सं.पु.पाठः।
२. सिञ्चय माम्, इति न.सं.पु.पाठः।
३. शल्यार्त्तस्याऽघुनौषधम्, इति न.सं.पु.पाठः।
४. तां हंस्येवमबोधयत्, इति न.सं.पु.पाठः।
५. सस्वरेण, इति न.सं.पु.पाठः।
६. नर्तकान् त्यज्य चाम्बरे, इति न.सं.पु.पाठः।

ततः स भ्रमरो व्योम्नि भ्रामं भ्रामं तया सह[७] । प्रसादोपर्यगच्छत् स स्थिता यत्र प्रभावती ॥१२॥
नटाश्चाप्यर्द्धयामिन्यां प्रययुः स्वाश्रमं पुनः । नर्तनञ्च समाप्याशु स्मरविरहिता मुने ॥१३॥
भृङ्गीतनुं परित्यज्य हंसी व्यक्ता बभूव सा । सन्दश्य चाधरं तस्या व्यक्तोऽभवत्स्मरः पुनः ॥१४॥
रक्षन्ती बाह्यद्वारं सा[८] तस्थौ हंसी निशान्तरे । तामारोप्य प्रभादेवीमङ्के स्मरोऽब्रवीद्वचः ॥१५॥

प्रद्युम्न उवाच

त्वदाननद्योतितकान्तिशोभितं[९] कलानिधिं पश्य विराजितं दिशि ।
विहायसि द्योतितमंशुभिर्हिमैः पयोधिभङ्गैरिव क्षालितं प्रिये ॥१६॥
उत्पश्यसि महाभागे प्रिये चारुसुलोचने । व्योम्नि तारा विराजन्ते पङ्क्तिबद्धाः सुकान्तयः[१०] ॥१७॥
अधोमुखी प्रिये भूत्वा मां त्वं किञ्चिन्न भाषसे । वचोऽमृतैः द्रुतं सिञ्च मामागतं[११] तृषार्दितम् ॥१८॥
अधोमुखं विहायाशु देहि मे चाधरामृतम् । मृणालकोमलाभ्यान्त्वं दोर्भ्यामालिङ्गनं कुरु ॥१९॥

स्कन्द उवाच

इत्युक्त्वा सहसा कामस्तस्या गण्डञ्चुचुम्ब हि । सव्येन पाणिनालिङ्ग्य व्यक्तौ कुचौ समस्पृशत् ॥२०॥
ततः प्रभावती सद्यो व्रीडाजाड्यं गता खलु । प्रद्युम्नाङ्गं स्पृशन्ती सा साध्वी पुलकिताऽभवत्[१२] ॥२१॥
सलज्जाऽधोमुखी भूत्वा किञ्चित्तिर्यगवेक्षिणी । प्रभावती तदा तस्मै व्याजहार वचः शनैः ॥२२॥

---

त्यसपछि त्यो भ्रमरो भ्रमरीका साथ आकाशमा घुमेर जहाँ प्रभावती बसेकी थिइन्, त्यसै घरको कौशीमा गयो। हे मुनि ! प्रद्युम्नबाहेकका अरु नटुवाहरू पनि नाच सकेर आधा रातमा आ–आफ्ना डेरामा गए। हंसी भ्रमरीको रूपलाई छोडेर आफ्नै रूपमा प्रकट भइन्। फेरि प्रद्युम्न पनि प्रभावतीको ओठ टोकेर मानिसका रूपमा प्रकट भए। राति बाहिर ढोकाको रक्षा गरेर हंसी बसिन्। प्रद्युम्नले ती प्रभावतीलाई काखमा राखेर भन्नलागे ॥१२–१५॥

प्रद्युम्नले भने – हे प्रिया ! तिम्रो मुखको जस्तो कान्ति भएका, दिशालाई उज्यालो पार्ने यी चन्द्रमालाई हेर। उज्याला शीतल किरणले यी चन्द्रमाले आकाशलाई उज्यालो पारेका छन्। यी चन्द्रमा समुद्रका सेता तरङ्गले पखालिएजस्तै उज्ज्वल देखिन्छन्। हे प्रिये ! सुन्दर आँखा भएकी तिमी अत्यन्त भाग्यमानी छ्यौ। आकाशमा पङ्क्तिबद्ध भएर ताराहरू विराजित भएका छन्। हे प्रिये ! मुन्टो निहुराएर मसँग किन केही बोल्दिनौ ? म तिर्खाएर तिमी समक्ष आएको छु। मलाई वचनरूपी अमृतले तुरुन्त सेचन गर। मुन्टो निहुराउन छोडेर मलाई ओठको अमृत देऊ। कमलजस्ता कोमल यी दुई हातले मलाई आलिङ्गन गर ॥१६–१९॥

कार्तिक स्वामीले भन्नुभयो – यति भनेर झट्ट प्रद्युम्नले तिनको गालामा चुम्बन गरे। दाहिने हातले अँगालो हालेर प्रभावतीका पुष्ट स्तन समाते। प्रभावती तुरुन्त लाजले बेहोस भइस्। प्रद्युम्नको शरीरमा स्पर्श गर्दै ती पतिव्रता सुन्दरी रोमाञ्चित भइन्। प्रभावतीले लाजले गर्दा मुन्टो निहुराएर उनले तेर्सो दृष्टिले हेरिन् र प्रद्युम्नलाई बिस्तारैसित भन्न लागिन् ॥२०–२२॥

---

७. बभ्रम्याशु समं तया, इति न.सं.पु.पाठः ।
८. बहिर्द्वारञ्च संरक्षन्, इति न.सं.पु.पाठः ।
९. तवाननासन्निभकान्तिसंभवम्, इति न.सं.पु.पाठः ।
१०. पङ्क्तिक्रमैश्च शोभनैः, इति न.सं.पु.पाठः ।
११. प्रसिञ्च्याशु त्वामागतम्, इति न.सं.पु.पाठः ।
१२. प्रद्युम्नाङ्गं स्पृशत्साध्वी साऽभूत्पुलकिताङ्गिनी, इति न.सं.पु.पाठः ।

प्रभावत्युवाच

प्रमर्दनञ्च मा कार्षीर्गण्डस्य कुचयोर्मम। अविवाहितसुन्दर्या[१३] रमणं नैव शोभते ॥२३॥
मया क्रीडसि[१४] यद्येवं त्वं कन्यादूषको ध्रुवम्। भविष्यसि न सन्देहो लोकाधमो हि नारकी ॥२४॥
देशकालानुरूपं त्वं समीक्ष्य च शुभाशुभम्। गान्धर्वेण विवाहेन कुरुष्वानुग्रहं मयि ॥२५॥
न चिरं सहते कामो मन्मनोमथनोद्भवः[१५]। कालो निमेषमात्रोऽपि युगायतेऽधुना प्रिय ॥२६॥

स्कन्द उवाच

प्रद्युम्नोऽपि ततः काले चाजुहोत्सहसानिशम्। मणिस्थाग्नौ महद्धेतौ पुष्पैर्मन्त्रानुदीरयन् ॥२७॥
प्रगृह्य पाणिना पाणिं प्रभावत्या हि दर्पकः। प्रदक्षिणञ्चकाराशु तन्मणिस्थानलस्य च ॥२८॥
साक्षीकृत्याशु पूर्णेन्दुं प्रभावत्या ललाटकम्। स चासीमन्तकं यावत् सिन्दूरेणान्वभूषयत् ॥२९॥
उद्दिश्य दक्षिणां मारः सङ्कल्प्य स[१६] द्विजन्मने। सङ्गृह्य पाणिना पाणिं स्वोरौ तामुपवेशयत् ॥३०॥
स्वाङ्कस्थां स प्रभादेवीं मधुरयंश्च सान्त्वयन्। चुचुम्ब शनकैर्गण्डे वासयन्मुखमारुतैः ॥३१॥
प्रभावत्याः पपौ वक्त्रं पद्मं मधुकरो यथा। आलिलिङ्ग च सुश्रोणीं क्रमेण रतिकोविदः ॥३२॥
आरामयद्रहस्येनां न वीर्यं प्रसरेद् यथा[१७]। चतुःषष्टिकलाभिश्च रतिकार्यविशारदः ॥३३॥
ततो ब्राह्ममुहूर्ते च ह्यवोचत्कैशवविर्वचः। प्रियेऽधुना गमिष्यामि द्वारकां तां नटालयात् ॥३४॥
प्रभावती ततस्तस्मै चावोचद्वचनं पुनः। अहमप्यागमिष्यामि भवता सह तां पुरीम्[१८] ॥३५॥

---

प्रभावतीले भनिन् – हे प्रद्युम्न ! मेरो गालामा चुम्बन नगर्नुहोस् र मेरा स्तन नमाड्नुहोस्। विवाह नगरेकी तरुणीसँग रमण गर्न सुहाउँदैन। मसँग रमण गर्नुभयो भने तपाईंलाई कन्या बिगार्ने दोष लाग्छ। लोकमा सबैले अधम भन्नेछन्। नरकमा जानुपर्ला। यसमा शङ्का छैन। देश, काल सबै विचार गरेर शुभ, अशुभ हेरी गन्धर्व विवाहद्वारा ममाथि हजुरले अनुग्रह गर्नुहोस्। कामवेदनाले मेरो मनलाई खूबसित मथन गरेको छ। म धेरैबेर सहन सक्दिनँ। हे प्रिय ! अहिले मलाई एक मिनेट पनि एक युगजस्तो भइरहेको छ ॥२३-२६॥

कार्तिक स्वामीले भन्नुभयो – त्यसपछि प्रद्युम्नले ठीक समयमा तेजिलो शिखा भएको मणिको अग्निमा मन्त्र जपेर फूलले होम गर्नुभयो। अनि प्रद्युम्नले आफ्ना हातले प्रभावतीको हात समातेर मणिमा रहेको अग्निको प्रदक्षिणा गर्नुभयो। पूर्ण चन्द्रमालाई साक्षी राखेर प्रभावतीको सिउँदोमा उहाँले सिँदुर हाल्नुभयो। प्रद्युम्नले सङ्कल्प गरेर ब्राह्मणलाई दक्षिणा छुट्याउनुभयो र हातले हात समातेर प्रभावतीलाई तिघ्रामा राख्नुभयो ॥२७-३०॥

आफ्नो काखमा राखिएकी प्रभादेवीलाई मीठो बोलीले सान्त्वना दिलाउनुभयो। मुखको हावाले सुवासित गराउँदै बिस्तारैसित गालामा म्वाईं खानुभयो। भ्रमराले कमललाई जस्तै गरी प्रभावतीको मुखपान गर्नुभयो। रतिमा सिपालु प्रद्युम्नले क्रमैसँग प्रभावतीलाई अँगालो मार्नुभयो। रतिकार्यमा सिपालु चौसट्ठी कलाका ज्ञाता प्रद्युम्नले वीर्य बाहिर नजाओस् भनेर प्रभावतीलाई आरामका साथ सुताउनुभयो। ब्राह्ममुहूर्तमा प्रद्युम्नले हे प्रिया ! अब म यस नयलयबाट द्वारका जान्छु भनेपछि प्रभावतीले पनि प्रद्युम्नसँगै आफू पनि द्वारका शहरमा आउनेछु भनिन् ॥३१-३५॥

---

१३. अविवाहितयुवत्या, इति न.सं.पु.पाठः।
१४. मां क्रीडयसि, इति न.सं.पु.पाठः।
१५. मन्मनो मन्थ्य संभव, इति न.सं.पु.पाठः।
१६. सङ्कल्पिता, इति न.सं.पु.पाठः।
१७. प्रसरेद् बहिः, इति न.सं.पु.पाठः।
१८. तत्पुरम्, इति न.सं.पु.पाठः।

प्रद्युम्न उवाच

कथं त्वं द्वारकामस्माद् गमिष्यसि प्रिये वद। देहेनानेव वै कान्ते प्रोत्तुङ्गधवलालयात् ॥३६॥
सहस्रं द्वारपा वीरा रक्षन्ति ते त्वहर्निशम्। एतद्धवलगेहे त्वद्रक्षकाः[१९] शस्त्रपाणयः ॥३७॥

प्रभावत्युवाच

परितुष्टेन दत्ता मे विद्या दुर्वाससा पुरा। तया सुविद्यया तुष्टा गिरिजा पूजनैः पुनः ॥३८॥
विद्यायाश्चैव देव्याश्च प्रभावाच्छक्तिरस्ति मे। यद्रूपं वीर ! काङ्क्षामि तत्तद्धर्तुं क्षमाऽस्म्यहम्[२०] ॥३९॥

स्कन्द उवाच

इत्युक्त्वा सहसागस्त्य ! दधार भृङ्गविग्रहम्। प्रभावती च तत्काले समक्षे मदनस्य च ॥४०॥
प्रद्युम्नोऽपि तदा सद्यो दधार भृङ्गविग्रहम्। हंसीं सम्यक् समाश्वास्याऽभ्रमतां तौ च भृङ्गकौ[२१] ॥४१॥
नटालयं समागम्य व्यक्तीकृत्य कलेवरौ। पुष्पकञ्च तया कामश्चारुरोह स्वभातृभिः[२२] ॥४२॥
प्रययौ द्वारकां कामो विमानेनार्कतेजसा। प्रभावत्या समं वीरैः प्रविवेशपुरं क्षणात् ॥४३॥

प्रातःकाले भवति च बहुधा कान्तिकान्ते सुरम्ये[२३]
दैत्येन्द्राणामिति च भगिनी नास्ति हर्म्योत्तमे सा।
नाट्यागारे सुबहुकुतुके नर्तकाः सन्ति नैव
चेत्याश्चर्यं प्रकटितमरं दानवैर्व्याकुलैस्तैः[२४] ॥४४॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये प्रद्युम्नोत्तरे प्रभावतीहरणं नाम
पञ्चसप्तत्युत्तरशततमोऽध्यायः ॥१७५॥

---

प्रद्युम्नले भन्नुभयो– हे प्रिये ! तिमी कसरी अग्लो, सेतो यस दरबारबाट यसै शरीरले हामीसँग द्वारका जान्छ्यौ, भन। हातमा हतियार लिएका हजारौं रक्षकहरूले रातिदन यस सेतो घरमा तिम्रो रक्षा गरिरहेका छन् ॥३६–३७॥

प्रभावतीले भनिन् – अघि प्रसन्न भएका दुर्वासाले मलाई एउटा विद्या दिएका छन्। त्यही विद्याले पूजा गर्दा पार्वती मसित प्रसन्न हुनुभएको छ। त्यो विद्या र देवीको प्रभावले गर्दा मसित शक्ति छ। म जुन रूप लिन चाहन्छु, त्यही रूप लिन सक्छु भन्ने कुरा तपाईं बुझ्नुहोस् ॥३८–३९॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! यति भनेर प्रभावतीले प्रद्युम्नको अगाडि तुरुन्तै भ्रमराको रूप लिइन्। प्रद्युम्नले पनि तुरुन्तै त्यसबखत भमराको रूप धारण गरे। हंसीलाई आश्वासन दिएर दुवै भ्रमराहरू घुमे। नाच देखाउने घरमा गएर आफ्नो शरीर देखाए। दाजुभाइ र प्रभावतीलाई साथमा लिएर प्रद्युम्न पुष्पक विमानमा चढे। सूर्यजस्तो तेज भएको विमानमा चढेर प्रद्युम्न प्रभावतीका साथ द्वारकामा आए। वीरहरूले उनीहरूलाई तुरुन्त शहरभित्र प्रवेश गराए ॥४०–४३॥

बिहान उठेर हेर्दा सुन्दर सुप्रभा शहरमा दैत्यराजको घरमा बहिनी थिइनन्। नटुवाहरू पनि नाचगृहमा देखिएनन्। पराक्रमी दैत्यहरूले के भयो भनेर बारम्बार आश्चर्य प्रकट गरे ॥४४॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्ड नेपालमाहात्म्यको प्रद्युम्नोत्तरमा प्रभावतीहरणनामक
एकसय पचहत्तरौं अध्याय पूरा भयो।

---

१९. त्वां रक्षकाः, इति न.सं.पु.पाठः।
२०. यद्रूपं वीर ! काङ्क्ष्येऽहं तत्तद्धर्तुं क्षमा विदुः, इति न.सं.पु.पाठः।
२१. बभ्रमताञ्च भृङ्गिणौ, इति न.सं.पु.पाठः।
२२. कामश्चारुरुहद् भ्रातृभिः सह, इति न.सं.पु.पाठः।
२३. प्रातःकाले भवति च बहुप्रोल्लसत्सुप्रभायाम्, इति न.सं.पु.पाठः।
२४. सुररिपुगणैर्विक्लवोक्तं मुहुर्वै:, इति न.सं.पु.पाठः।

# षट्सप्तत्युत्तरशततमोऽध्यायः

नारदद्वारा प्रभावतीप्राप्त्युपायस्य दिग्दर्शनम्

स्कन्द उवाच

हतायाञ्च प्रभावत्यां दैत्या दुःखातुराः समे[1]। अम्बरादाययौ तत्र यदृच्छया हि नारदः ॥१॥
प्रणिपत्यार्चनैरर्घ्यैरुपवेश्यासने मुनिम्। महेन्द्रदमनो भक्त्या पप्रच्छ तन्निदानकम् ॥२॥

इन्द्रदमन उवाच

नमस्ते मुनिशार्दूल ! सर्ववार्ताविशारद। प्रष्टुमिच्छाऽस्ति मे तात त्वत्तः सर्वविदो ध्रुवम्[2] ॥३॥
प्रासादेऽस्मिन् स्थिता कन्या सहस्रैः रक्षिताऽसुरैः। केन हृता न जानेऽहं भगिनी क्व गताऽथवा ॥४॥
तत्रस्था नर्तका भूयो न जाने क्व गता निशि। नानाभावैर्नरीनृत्य व्यमोहयन् रसैर्हि नः ॥५॥

नारद उवाच

ये नर्तका अनर्तिषुर्भूपते ! तव सन्निधौ[3]। ते यादवा न सन्देहः स्युः प्रद्युम्नपुरःसराः ॥६॥
युष्मान् प्रवञ्च्य वीरोऽसौ प्रद्युम्नः छलनर्तकः[4]। नृत्यैर्नवरसै रूपं चछाद मायया स्वया[5] ॥७॥
मायया मोहयन् युष्मान् प्रद्युम्नो बहुनर्त्तनैः। हर्म्यमारुह्य रात्रौ स जहाराशु प्रभावतीम् ॥८॥
अविदूरस्थिते वीरे दोलाद्रौ गरुडध्वजे। तस्माद् भयं समुत्सृज्य द्वारकां तां स नीतवान्[6] ॥९॥

---

अध्याय - १७६

नारदजीद्वारा प्रभावतीको प्राप्तिका लागि उपायको दिग्दर्शन

कार्तिक स्वामीले भन्नुभयो– प्रभावतीलाई हरण गरेपछि सबै दैत्यहरू अत्यन्त दुःखित भए। त्यसैबेला घुम्दै नारदऋषि आकाशबाट त्यहाँ आउनुभयो। महेन्द्रदमन नामक राक्षसले नारदजीलाई पूजा, अर्घ्य तथा आसन दिइसकेपछि प्रणाम गरेर आउनाको कारण भक्तिपूर्वक सोध्यो ॥१–२॥

इन्द्रदमनले भन्यो – हे मुनिश्रेष्ठ नारदजी ! हजुर सम्पूर्ण वृत्तान्तका ज्ञाता हुनुहुन्छ, सबै कुरा जान्ने हजुरसित म प्रश्न सोध्न चाहन्छु। हजारौं राक्षसहरूले रक्षा गरेर यस भवनमा राखिएकी मेरी बहिनीलाई कसले हरण गऱ्यो अथवा कतै गई कि के भयो ? त्यहाँ नटुवाहरू बसेका थिए। तिनीहरूले विभिन्न भावहरू प्रदर्शन गरेर हामीलाई रसमुग्ध तुल्याएका थिए। यी नटुवाहरू पनि राति कता गए ॥३–५॥

नारदले भन्नुभयो – हे महाराज ! जुन त्यहाँ नटुवाहरू थिए र जसले तपाईंहरूको अघिल्तिर नृत्य देखाएका थिए, ती प्रद्युम्न आदि गरिएका यादवहरू हुन्, यसमा सन्देह छैन। वीर प्रद्युम्नले नटुवाको रूप लिएर नयाँ नयाँ रसले भरिएका नृत्यद्वारा माया सिर्जना गरी आफूलाई लुकाएर तिमीहरूलाई ठगे। मायाबाट अनेकौं नृत्य गरेर प्रद्युम्नले तिमीहरूलाई मोहित तुल्याई राति घरको कौशीमा चढेर प्रभावतीलाई तुरुन्त हरण गरे। भगवान् कृष्ण यहाँ नजिकैको दोलाचल पर्वतमा हुनुहुन्थ्यो। त्यसैले उनले कति डर नमानीकन प्रभावतीलाई द्वारका पुऱ्याए ॥६–९॥

---

१. सर्वदुःखातुरेऽसुरे, इति न.सं.पु.पाठः।
२. प्रश्नकामोऽस्मि मे तात त्वयि सर्वविदि ध्रुवम्, इति न.सं.पु.पाठः।
३. ये नर्तका महाराज ! तवाग्रे समनर्तयन्, इति न.सं.पु.पाठः।
४. स्याद्धि नर्तकः, इति न.सं.पु.पाठः।
५. माययाच्छाद्य वञ्चयत्, इति न.सं.पु.पाठः।।
६. तमायनीतयत, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

नारदस्य वचः श्रुत्वा शक्रतापो रुषान्वितः। तापानलैः प्रजज्ज्वाल स्वकौ पाणी व्यमर्दयत्[७] ॥१०॥
प्रद्युम्नं समधिक्षिप्य[८] क्रोधादरुणलोचनः। व्याजहार तदा वाक्यं शक्रचापश्च नारदम्[९] ॥११॥

शक्रताप उवाच

अहो पराक्रमो मेऽद्य प्रद्युम्नेन प्रधर्षितः[१०]। बालिशकीटतुल्येन त्रैलोक्यं येन लुण्ठितम् ॥१२॥
मम पराक्रमोऽजस्रं वह्निज्वालासमातपः। त्रैलोक्ये न सहन्ते[११] यं सोऽद्य निष्फलतां गतः ॥१३॥
मर्त्येन स्वल्पवीर्येण सानुजे मयि जीवति। धिक्धिङ्मे जीवनं तात भगिनी प्रहृता यतः ॥१४॥
ईदृशी भवता वार्ता विदिता यदि[१२] मे विभो। उपायश्चापि वक्तव्यः प्रतीकारं करोम्यहम्[१३] ॥१५॥
ज्ञात्वोपायं भवद्वक्त्राद्[१४] हनिष्यामि च यादवान्। गरुडवाहनं[१५] मारं हन्तारं शम्बरस्य च ॥१६॥
यदि जानामि तान्कृष्णं हनिष्ये तत्सुतान् सुखात्। कंसकालं जरासन्धहन्तारं दैत्यशात्रवम्[१६] ॥१७॥

स्कन्द उवाच

एवं वदन्तं तं दैत्यं शक्रतापं च नारदः[१७]। विहस्य त्वरितं दृष्ट्वा व्याजहार शुभं वचः ॥१८॥

---

कार्तिक स्वामीले भन्नुभयो – नारदजको कुरा सुनेर इन्द्रदमन अत्यन्त रिसायो। प्रतापरूपी अग्नि प्रदर्शन गर्दै बल्न थाल्यो। आफ्ना हात माड्यो। प्रद्युम्नलाई आक्षेप लगाउँदै रीसले राता आँखा पारेर इन्द्रदमनले नारदसित भन्यो ॥१०-११॥

इन्द्रदमनले भन्यो – ओहो ! तीनै लोकलाई लुट्न सक्ने मेरो पराक्रमलाई विचरो किरोजस्तो प्रद्युम्नले मर्दन गरिदियो। आगोजस्तै निरन्तर तेजिलो रहन मेरो पराक्रमलाई तीनै लोकमा कसैले सहन सक्दैन। त्यो तेज आज निष्फल भयो। भाइसहित यहाँ मजस्तो वीर बाँच्दाबाँच्दै तुच्छ पराक्रम भएको जाबो मान्छेले मेरी बहिनी अपहरण गऱ्यो। हे नारदजी ! मेरो जीवनलाई धिक्कार छ। हे प्रभो ! यस्तो कुरा थाहा पाउनासाथ तपाईंले यहाँ आफैँ आएर मलाई बताइदिनुभयो। म त्यसको प्रतीकार गर्छु। तपाईंको मुखबाट यो कुरा थाहा पाएँ। अब म गरुडवाहन विष्णु र शम्बर दैत्यका घातक प्रद्युम्नलाई मार्छु। यदि फेला पारेँ भने कंसका काल, जरासन्धका हत्यारा विष्णु र शम्बर दैत्यका शत्रु प्रद्युम्न एवं त्यसका सबै छोराहरूलाई मार्नेछु ॥१२-१७॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य ! इन्द्रदमनले यति भनेपछि नारदमुनिले केही हाँसेर त्यससँग हितकारक वचन बोल्नुभयो ॥१८॥

---

७. ममर्द यत्, इति न.सं.पु.पाठः।
८. प्रद्युम्नाय त्वधिक्षिप्य, इति न.सं.पु.पाठः।
९. नारदायेन्द्रतापनः, इति न.सं.पु.पाठः।
१०. विमन्थितः, इति न.सं.पु.पाठः।
११. सह्यन्ते, इति न.सं.पु.पाठः।
१२. विदिदापि च, इति न.सं.पु.पाठः।
१३. उक्तं स्वयं समागत्य प्रतीकारं करोमि तत्, इति न.सं.पु.पाठः।
१४. ज्ञातश्च त्वन्मुखातात, इति न.सं.पु.पाठः।
१५. तथा गरुडध्वजम्, इति न.सं.पु.पाठः।
१६. शम्बरस्य च, इति न.सं.पु.पाठः।
१७. एवमुक्ते तदाऽगस्त्य। शक्रतापे च नारदः, इति न.सं.पु.पाठः।

नारद उवाच

नाधिक्षिप महाराज ! कृष्णं प्रबलतेजसम्[१८] । कौस्तुभसुमणिर्यस्य सोऽजयो विद्यते खलु[१९] ॥१९॥
खगेन्द्रो वाहनं यस्य चायुधञ्च सुदर्शनम् । कौमोदकी गदा शङ्खः स विजेयः कथं वद[२०] ॥२०॥
येन युष्मत्कुलश्रेष्ठो वः प्रपितामहो बलिः[२१] । प्रवेशितो हि पाताले स कथं हन्यते वद ॥२१॥
शतायुतैश्च साहस्रैर्बलैस्त्वदधिकैर्युताः । हतास्ते चापि कृष्णेन स कथं हन्यते वद ॥२२॥
प्रद्युम्नोऽपि महावीरो निहतो येन शम्बरः[२२] । बालेनाप्यल्पवीर्येण स कथं हन्यते वद ॥२३॥

इन्द्रदमन उवाच

त्रिगङ्गासङ्गमे तात लब्धो मया वरोत्तमः । रुद्रधारामहातीर्थे पितामहाद्विभो खलु ॥२४॥
तस्माल्लब्धवरोऽहञ्च गणयामि न कञ्चन[२३] । ब्रह्मणा यो वरो दत्तो न मिथ्या स्यात् कदाचन[२४] ॥२५॥
तथापि च मया कृष्णो जेतव्यः स कथं वद । स उपायश्च वक्तव्यो विजयी येन स्यामहम्[२५] ॥२६॥

नारद उवाच

मणिञ्च कौस्तुभं त्वं तं हर्तुं शक्नोसि चेत् पुनः । तदा दशगुणं वीर्यं भविष्यति तवाऽसुर ॥२७॥
यदि चेदस्ति ते कामः कृष्णं जेतुं महासुर । पुरीं तां द्वारकां गत्वा कौस्तुभं मणिमाहर[२६] ॥२८॥
यावद्दोलाचले कृष्णः स्थितो[२७] द्वारावतीं व्रज । द्रुतमाहर[२८] तद् रत्नं वायुवेगेन संव्रज ॥२९॥
भगिन्या हरणाद् दुःखमस्ति ते मानसे पुनः । तत्र प्रभावतीञ्चापि हृत्वानय निजे गृहे[२९] ॥३०॥

---

नारदले भन्नुभयो – हे महाराज ! अत्यन्त तेजस्वी कृष्णलाई बढी आक्षेप नलगाऊ । जोसित कौस्तुभमणि छ, त्यो अजेय नै हुन्छ । गरुड जसको वाहन छ, सुदर्शन जसको हतियार छ, कौमुदकी जसको गदा छ र शङ्ख छ, त्यस्तालाई कसरी जित्न सकिन्छ ? भन । जसले तिम्रा कुलका प्रपितामहलाई अघि पाताल पठाएको थियो, त्यस्तालाई कसरी मार्न सकिन्छ, भन । सयौं हतियारधारी तिमीभन्दा बलिया हजारौं सैन्यले युक्त भएका राक्षसलाई पनि जसले मारे, त्यस्ता कसरी मर्छन्, भन । बालक अवस्थामा महावीर प्रद्युम्नले शम्बर दैत्यलाई मारेका थिए । त्यस्तालाई कसरी मार्न सकिन्छ, भन ॥१९-२३॥

इन्द्रदमनले भन्यो – हे नारदजी ! मैले त्रिगङ्गाको सङ्गम भएको रुद्रधारा महातीर्थमा स्नान गरेर ब्रह्माजीबाट वर प्राप्त गरेको छु । उहाँबाट नै वर पाएको हुँदा म संसारका कसैलाई पनि गन्दिनँ । ब्रह्माजीले दिनुभएको वर कहिल्यै पनि झूटो हुँदैन । तैपनि मैले कृष्णलाई जित्नै पर्छ । जुन कर्म गर्दा कृष्णलाई जित्न सकिन्छ, त्यो उपाय मलाई बताउनुहोस् ॥२४-२६॥

नारदले भन्नुभयो – हे राक्षस ! यदि तिमीले भगवान्‌को कौस्तुभमणि हरण गर्न सक्यौ भने दशगुणा तिम्रो पराक्रम बढ्नेछ । हे दैत्य ! तिमी यदि कृष्णलाई जित्ने इच्छा राख्छौ भने द्वारकामा गएर कौस्तुभमणि हरण गर । कृष्ण दोलाचल पर्वतमा रहेकै बेला तिमी द्वारका जाऊ र तुरुन्त त्यो रत्न चोर । वायुको वेगले दौडेर आऊ । यदि तिम्रो मनमा बहिनीको हरण भयो भन्ने दुःख लाग्छ भने प्रभावतीलाई पनि हरण गरेर घरमा ल्याऊ ॥२७-३०॥

---

१८. कृष्णायमिततेजसे, इति न.सं.पु.पाठः ।
१९. विद्यते खलु सोऽजयः, इति न.सं.पु.पाठः ।
२०. स कथं हि जयो वद, इति न.सं.पु.पाठः ।
२१. येन युष्मत्कुलं पूर्वं वः प्रपितामहं सुखम्, इति न.सं.पु.पाठः ।
२२. येन हतोऽपि शम्बरः, इति न.सं.पु.पाठः ।
२३. लोकं न गणयामहे, इति न.सं.पु.पाठः ।
२४. ब्रह्मणा यद्वरं दत्तं न मिथ्या तद्भवेत्कदा, इति न.सं.पु.पाठः ।
२५. तदुपायञ्च वक्तव्यो येनैव जीयते हरिः, इति न.सं.पु.पाठः ।
२६. द्वारवतीं समागत्य कौस्तुभहरणं कुरु, इति न.सं.पु.पाठः ।
२७. कृष्णे स्थिते, इति न.सं.पु.पाठः ।
२८. ह्रियतामाशु, इति न.सं.पु.पाठः ।
२९. यथागृहम्, इति न.सं.पु.पाठः ।

स्कन्द उवाच

दत्त्वाशिषञ्च देवर्षिर्दानवेन्द्राय तत्क्षणात्[३०] । वीणां प्रवादयन् शश्वद् ययौ दोलाचलं मुदा ॥३१॥
तत्सर्वं वर्णयामास कृष्णाय कलहप्रियः । ततो द्वारवतीं भूयो गन्तुं प्रचक्रमे मुनिः ॥३२॥
गते च नारदेऽगस्त्य ! महेन्द्रदमनः पुनः । हर्तुं मनो दधे रत्नं द्वारवत्यां महामनाः ॥३३॥
अध्यायमेनं शृणुयाद् हि भक्त्या[३१] विष्णोर्जयाख्यं परमं हि मर्त्यः ।
चौराद् भयन्नास्ति पराभवश्च शत्रोर्हि युद्धे तुमुलेऽपि तस्य ॥३४॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये नारदवाक्यं नाम षट्सप्तत्युत्तरशततमोऽध्यायः ॥१७६॥

---

कार्तिक स्वामीले भन्नुभयो – यसरी नारदजी इन्द्रदमन नाम गरेको राक्षसलाई आशीर्वाद दिएर बारम्बार वीणा बजाउँदै प्रसन्न भएर दोलाचल पर्वतमा जानुभयो। झगडा रुचाउने नारदजीले त्यो सबै वृत्तान्त कृष्णलाई बताएर द्वारकातिर जाने तर्खरमा लाग्नुभयो। हे अगस्त्य मुनि ! नारदजी गइसकेपछि इन्द्रदमन नाम गरेको त्यस दैत्यले पनि द्वारकामा गएर रत्न चोर्ने विचार गऱ्यो ॥३१–३३॥

जसले विष्णुको विजयको वर्णन भएको यो अध्याय भक्तिपूर्वक हुन्छ त्यसलाई चोरबाट डर हुँदैन। जस्तोसुकै ठूलो युद्ध भए तापनि त्यसमा शत्रुबाट हार खानुपर्दैन ॥३४॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्ड नेपालमाहात्म्यको प्रद्युम्नोत्तरमा नारदद्वारा उपायप्रदर्शननामक एकसय छयत्तरौं अध्याय पूरा भयो।

---

३०. नारदोऽपि च दत्ताशीर्दानवेन्द्राय तत्क्षणात्, इति न.सं.पु.पाठः। ३१. अध्यायमेतच्छृणुयाद्भि भक्त्या, इति न.सं.पु.पाठः।

# सप्तसप्तत्युत्तरशततमोऽध्यायः

## कौस्तुभमणिहरणप्रसङ्गः

स्कन्द उवाच

निर्गते नारदे पुर्य्याः क्रोधाद्रक्तेक्षणोऽसुरः। सन्नद्धकवचो धन्वी खड्गी याने रुरोह सः[१] ॥१॥
दानासुरेण सार्द्धं वै ह्यनुजेन बलीयसा। वायुवेगेन मायावी ययौ द्वारावतीं द्रुतम् ॥२॥
ततो द्वारावतीं प्राप्तः शक्रतापो हि तत्क्षणात्। चक्रे हर्तुमुपायं स कौस्तुभं तं पुराद् बहिः[२] ॥३॥
व्याचष्ट वचनं वज्रो दानासुरञ्च यानगः। तं राहुं चैव सन्ध्यायां रत्नहरणलालसः ॥४॥

शक्रताप उवाच

राहो गत्वाम्बरं शीघ्रं यशांसीव[३] सुनिर्मलम्। उदितं सकलञ्चन्द्रं गगनस्थो महाबली ॥५॥
तावद् ग्रस सखे धृत्वा मत्कार्यसाधने दृढः[४]। हरावो हि मणिं यावद् भगिनीञ्च प्रभावतीम् ॥६॥
दान ! त्वया स्वसा साऽपि[५] ह्रियतां निशि वेश्मनः। वासकोष्ठाद् बहिः स्थित्वा माययाच्छन्नवर्ष्मणा[६] ॥७॥

स्कन्द उवाच

ततस्तस्य वचः श्रुत्वा सैंहिकेयो महाबली। उत्पपात द्रुतं ग्रस्तुमुदितं शशिनं निशि[७] ॥८॥
अग्रसीत्त्वरितं चन्द्रं सैंहिकेयोऽम्बरे निशि। यामस्य प्रथमे भागे ह्यन्धीभूता महानिशा ॥९॥
रूपमास्थाय कृष्णस्य शक्रतापो गृहोत्तमम्। विवेशाशु महारात्रौ रुक्मिण्याः शयनालयम् ॥१०॥
विमोहयँश्च साहस्रान् यादवाँश्चैव रक्षकान्। ददर्श रत्नशोभाढ्यभित्त्यां समवलम्बितम् ॥११॥

---

## अध्याय - १७७

### कौस्तुभमणिको अपहरणको प्रसङ्ग

कार्तिक स्वामीले भन्नुभयो – शहरबाट नारद निक्लिसकेपछि रीसले रातो आँखा बनाउँदै कवच पहिरिएर धनुष एवं तरवार हातमा लिएर त्यो राक्षस रथमा चढ्यो। बलियो भाइ दानासुरलाई साथमा लिएर मायावी त्यो राक्षस वायुवेगले तुरुन्त द्वारका गयो। तुरुन्त इन्द्रदमन द्वारकामा पुग्यो। उसले शहरबाहिरै बसेर त्यो रत्न चोर्ने उपाय रच्यो। रत्नलाई चोर्न यानमा चढेर गएको त्यस दैत्यले साँझ परेपछि राहु र दानासुरलाई भन्यो ॥१-४॥

इन्द्रदमनले भन्यो – हे राहु ! तिमी आकाशमा जाऊ। मेरो कार्य सम्पन्न गर्न दृढ भएर लाग। जबसम्म हामी दुई दाजुभाइले द्वारकाबाट मणि र प्रभावती बहिनीलाई हरण गर्दैनौं, त्यहाँसम्म कीर्तिझैं अत्यन्त निर्मल भएका सम्पूर्ण कलाले युक्त भएर उदाएका चन्द्रमालाई डसिराख अर्थात् उज्यालो हुन नदेऊ, तुरुन्त गइहाल। हे दानसुर ! तिमी बहिनी बस्ने कोठाभन्दा बाहिर बसेर मायाले आफ्नो शरीरलाई लुकाऊ र राति महलबाट बहिनीलाई अपहरण गर ॥५-७॥

कार्तिक स्वामीले भन्नुभयो – त्यसपछि इन्द्रदमनको कुरा सुनेर महाबली राहु उदाएका चन्द्रमालाई ग्रास गर्नका लागि आकाशमा तुरुन्त उफ्रियो। रातको पहिलो प्रहरमा राहुले चन्द्रमालाई तुरुन्त डस्ने काम गर्‍यो। सम्पूर्ण दिशाहरू अँध्यारा भए। इन्द्रदमन कृष्णको रूप धारण गरेर राति रुक्मिणीको उत्तम शयनागारमा तुरुन्त प्रवेश गर्‍यो। उसले हजारौं यादव र रक्षकहरूलाई मोहित तुल्याई राखेका कृष्णलाई रत्नको शोभाले भरिएको भित्तोमा झुन्ड्याएको देख्यो ॥८-११॥

---

१. तदारुहत्, इति न.सं.पु.पाठः।
२. तद्रत्नस्यैवं पुराद्बहिः, इति न.सं.पु.पाठः।
३. यशांसि च, इति न.सं.पु.पाठः।
४ भूत्वा ग्रस्तो हि तावत्त्वं तिष्ठ भो सहसा व्रज, इति न.सं.पु.पाठः।
५. स्वसारन्ताम्, इति न.सं.पु.पाठः।
६. माययाच्छन्नविग्रहः, इति न.सं.पु.पाठः।
७. उत्पपात द्रुतं व्योम्नि ग्रस्तुं चन्द्रोदितं निशि, इति न.सं.पु.पाठः।

विद्योतयच्च स्वाभाभिः[८] शयनागारमुज्ज्वलम्। ज्वलत्कान्ति महारत्नं सूर्यमिवाम्बरेऽपरम्[९] ॥१२॥
ददर्श स्वर्णपर्य्यङ्के रत्नाङ्के रुक्मिणी तदा। निद्रावशगतां शश्वद्रत्नभाभिर्विभासिताम् ॥१३॥
आदाय दानवो रत्नं शनैः शनैरुपाव्रजत्। विनिर्ययौ बहिर्द्वाराद्रक्षकाँश्चैव लङ्घयन् ॥१४॥
मायया गूढरूपो हि द्वार्बहिःस्थोऽवलोकयन्। निर्गतां भगिनीं कोष्ठाद्दानो जहार साम्प्रतम् ॥१५॥
तौ भगिनीञ्च रत्नञ्च यानेऽस्थापयतां द्रुतम्। यानेन त्वरितं दैत्यावुत्पेततुर्विहायसा ॥१६॥
ततो मुमोच चन्द्रं स सैंहिकेयः पुनस्तदा। जगाम त्वरितं तस्माद्यत्रेन्द्रदमनः स्थितः ॥१७॥
तत्रायातौ द्रुतं दैत्यौ भ्रात्रा सहाम्बरेण वै। आस्थाप्य भगिनीं याने कौस्तुभञ्च मुदायुतौ[१०] ॥१८॥
ततः स हिमवत्कुक्षिं प्राप्तवान् यानगोऽसुरः। लब्धमनोरथो हृष्टः प्रययौ सुप्रभां पुरीम् ॥१९॥
ततो रत्नं प्रभादेवीं प्रेक्ष्य सर्वेऽसुरास्तदा। मुमुदिरे भृशं शश्वच्छक्रतापञ्च मेनिरे ॥२०॥
बहुभिर्मङ्गलैर्दैत्या नीराजनैः प्रभावतीम्। पुरीं प्रवेशयन्ति स्म बहुमानपुरःसरम् ॥२१॥
ऊचुर्जानपदास्तस्मै साधु साध्विति वीर हे। दूरीकृता च नो व्रीडा प्रभावत्यागता यतः[११] ॥२२॥
ततः संन्यस्य तद्रत्नं कच्छपायेन्द्रतापकः। अवीविशद्बिलं रम्यञ्चन्दनाद्रिसुकन्दरे[१२] ॥२३॥
अरक्षत्कच्छपो रत्नं स्वगलेनावलम्बितम्। महाकायो महावीरश्चावात्सीदभ्रदशम्बरे ॥२४॥
तावद्वै द्वारवत्याञ्च ह्येवं कोलाहलोऽजनि। प्रभावती च नास्तीति हृतः केनेति कौस्तुभः ॥२५॥
तदैव[१३] नारदो धीमान् प्राप्तो द्वारवतीं मुदा। रत्नस्यावर्णयत् वृत्तं[१४] दैत्येन संहृतस्य च ॥२६॥

---

आकाशमा अर्को सूर्य उदाएको हो कि भनेजस्तो आफ्ना प्रकाशले शयनकक्षलाई प्रकाशित तुल्याउँदै सुशोभित भएको महारत्नलाई देख्यो। रत्नले खचित भएको सुनको पलङमा रत्नका कान्तिले चम्किएकी मस्त निद्रामा परेकी रुक्मिणीलाई त्यसबखत उसले देख्यो। त्यस दानवले विस्तार विस्तार रत्नलाई लियो र रक्षकहरूलाई नाघेर अर्थात् उनीहरूले थाहा नपाउने गरी घरको ढोकाबाट बाहिर निस्क्यो ॥१२-१४॥

मायाले गुप्तरूपमा ढोका बाहिरै बसेको दानासुरले बाहिर निक्लिन लागेकी बहिनीलाई देख्नासाथ हरण गर्‍यो। बहिनी र रत्नलाई ल्याएर विमानमा राख्यो र त्यो दैत्य विमान लिएर आकाशमा तुरुन्त उड्यो। त्यसपछि राहुले चन्द्रमालाई छाडिदियो अनि त्यो इन्द्रदमन नाम गरेको राक्षस जहाँ थियो त्यसै ठाउँमा गयो। इन्द्रदमन दैत्य दुईवटा भाइहरूका साथमा बहिनी र कौस्तुभमणिलाई यानमा राखेर आकाशमार्गबाट त्यहाँ आयो ॥१५-१८॥

इच्छा पूर्ण भएकोले अत्यन्त प्रसन्न भएको त्यो राक्षस हिमालयको काखमा रहेको सुप्रभा नगरीमा आयो। त्यसपछि सबै राक्षसहरू प्रभादेवी र रत्नलाई देखेर अत्यन्त हर्षित भए। इन्द्रदमन दैत्यको खूब प्रशंसा गरे। दैत्यहरूले उनीहरूलाई ठूलो मङ्गल र नीराजन गरेर बडो सम्मानका साथ आफ्नो शहरमा प्रवेश गराए। जनताहरूले त्यस दैत्यलाई हे वीर ! ठीक गर्नुभयो किनभने प्रभावती आइपुगिन्, हाम्रो लाज हट्यो भनेर स्यावासी दिए। त्यसपछि त्यो रत्न इन्द्रदमनले कच्छपासुरलाई दियो र चन्दनगिरि पर्वतको गुफामा प्रवेश गर्‍यो। अत्यन्त ठूलो शरीर भएको महावीर कच्छपासुरले त्यो मणि गलामा लगाएर त्यसै तलाउको पानीभित्र पसी रक्षा गर्न थाल्यो। द्वारकामा पनि प्रभावतीलाई कसले हरण गर्‍यो, कौस्तुभमणि कसले चोर्‍यो भनेर ठूलो कोलाहल मच्चियो। त्यसैबेला नारदमुनि द्वारका पुग्नुभयो र सबै कुरा दैत्यले हरण गरेको हो भन्ने कुरा उहाँले बताउनुभयो ॥१९-२६॥

---

८. विद्योतयन्तमाभाभिः, इति न.सं.पु.पाठः।
९. ज्वलच्छ्रियं महारत्नं सूर्यो यथाम्बरेऽपरः, इति न.सं.पु.पाठः।
१०. कौस्तुभेनेन्द्रतापकः, इति न.सं.पु.पाठः।
११. चैषा प्रत्यागता यतः, इति न.सं.पु.पाठः।
१२. रम्यं चन्दनागिरिगह्वरे, इति न.सं.पु.पाठः।
१३. तस्मिँश्च, इति न.सं.पु.पाठः।
१४. सर्वमवर्णयत्तस्मै, इति न.सं.पु.पाठः।

नारद उवाच

शक्रतापेन ते भार्या प्रभावती हता रहः। कौस्तुभाख्यं सुरत्नञ्च रात्रावद्य द्रुतं स्मर ![१५] ॥२७॥
गच्छत त्वरितं यूयं यत्र विष्णुः शिलोच्चये। तद्वार्ता स्मर ! वक्तव्या गरुडकेतवे खलु ॥२८॥
हतरत्नस्य विष्णुर्नः प्रतिकारं करिष्यति। रत्नद्वयं समाहृत्य सुप्रभायां स्थितोऽसुरः ॥२९॥

स्कन्द उवाच

नारदस्य वचः श्रुत्वा प्रद्युम्नप्रमुखा मुने। मेनिरे तद्वचः सत्यमृतमिति समन्ततः ॥३०॥
प्रद्युम्नप्रमुखा वीरा उत्पेतुर्यादवा द्रुतम्। अन्तरिक्षे विमानेन शक्रदत्तेन रंहसा ॥३१॥
अन्तरिक्षे विमानेन प्रययुर्यादवास्तदा। दोलाचलं क्रमेणाशु म्लानमुखा हतश्रियः ॥३२॥
प्रणम्य दण्डवद्भूमौ तार्क्षारूढञ्च यादवाः। तस्मै निवेदयन्ति स्म तद्वार्त्तां गद्गदोदितैः ॥३३॥
श्रुत्वा तेषां वचः कृष्णो हरणाद् वधुरत्नयोः[१६]। भृशञ्चुकोप दैत्येभ्यः स प्रलयाऽनलोपमः ॥३४॥
मुहूर्तं ध्यायमानोऽसौ वार्तां ज्ञात्वा हरिर्हि ताम्[१७]। व्याचष्ट वचनं रोषात्प्रद्युम्नाय घटोद्भव ॥३५॥

श्रीकृष्ण उवाच

मम रूपं समास्थाय हृतं रत्नं दुरात्मना। शक्रारिणा हृता रात्रौ तस्य भ्राता प्रभावती ॥३६॥
यदि प्रभावती तेन हृता दैत्येन ते गृहात्। हनिष्यसि ह्यवश्यन्तं पुत्र ! रत्नापहारिणम्[१८] ॥३७॥
हत्वा तं सानुजं दैत्यं स्वर्गेऽपि च दिवस्पतेः। तनिष्यसि मुदं पुत्र प्राक्तनद्वेषकारणात्[१९] ॥३८॥

---

नारदले भन्नुभयो – हे प्रद्युम्न ! तिम्री पत्नी प्रभावती र कौस्तुभमणिलाई आजै राति इन्द्रदमन राक्षसले हरेर लगेको छ। जुन दोलागिरिमा भगवान् विष्णु बस्नुभएको छ, त्यसै ठाउँमा तुरुन्त गइहाल। हे प्रद्युम्न ! त्यो वृत्तान्त भगवान् विष्णुलाई भन। रत्न चोर्ने त्यस दैत्यलाई भगवान् विष्णुले प्रतीकार गर्नुहुनेछ। त्यो दैत्य प्रभावती र कौस्तुभमणि लिएर सुप्रभा नाम गरेको शहरमा बसेको छ॥२७-२९॥

कार्तिक स्वामीले भन्नुभयो – नारदको भनाइ सुनेर प्रद्युम्न आदि यादवहरूले त्यो कुरालाई चारैतिरबाट हेर्दा सत्य र उचित हो भन्ने ठाने। त्यसपछि प्रद्युम्न आदि वीर यादवहरू तुरुन्त इन्द्रले दिएको विमानमा चढेर वेगसित अन्तरिक्षमा उडे। अन्तरिक्षमा उडेको विमानबाट यादवहरू मलिन मुख लगाएर श्रीविहीन हुँदै तुरुन्त क्रमैले दोलाचल पर्वतमा पुगे। गरुडमाथि चढेका भगवान् कृष्णलाई यादवहरूले दण्डवत् प्रणाम गरे र गद्गद स्वरले त्यो सबै वृत्तान्त उहाँलाई निवेदन गरे। रत्न र प्रभावती चोरिएको घटनासँग सम्बद्ध तिनीहरूको कुरा सुनेर प्रलयकालीन आगोजस्तै बनेका विष्णु दैत्यहरूसित अत्यन्त रिसाउनुभयो। हे अगस्त्य मुनि ! एकछिन विचार गरी सम्पूर्ण वृत्तान्त ध्यानद्वारा थाहा पाएर भगवान् विष्णुले क्रुद्ध हुँदै प्रद्युम्नलाई भन्न लाग्नुभयो ॥३०-३५॥

श्रीकृष्णले भन्नुभयो – मेरो रूप लिएर त्यस दुष्टले रत्न चोर्‍यो। इन्द्रको शत्रु त्यसको भाइले राति प्रभावतीलाई हरण गर्‍यो। हे छोरा ! यदि त्यस दैत्यले तिम्रो घरबाट प्रभावतीलाई अपहरण गर्‍यो भने रत्न अपहरण गर्ने त्यस दैत्यलाई अवश्य मार्नुपर्छ। हे छोरा ! पहिलेदेखि नै विरोध गर्दै आएको त्यस दैत्यलाई र त्यसको भाइलाई पनि मारेर तिमीले स्वर्गमा इन्द्रको हर्षलाई पनि बढाउनेछौ। वास्तवमा त्यस दैत्यलाई मारेपछि हामी त खुसी हुन्छौं हुँछौ, इन्द्र पनि खुसी हुनेछन् ॥३६-३८॥

---

१५. कौस्तुभं मणिरत्नञ्च रात्रावद्य च मन्मथ, इति न.सं.पु.पाठः।
१६. हृतं रत्नं प्रभावतीम्, इति न.सं.पु.पाठः।
१७. मुहूर्तं ध्यायमानोऽपि वार्ता जानन् हरिर्हि तत्, इति न.सं.पु.पाठः।
१८. रत्नप्रहारिणम्, इति न.सं.पु.पाठः।
१९. पूर्वविरोधसंवृतम्, इति न.सं.पु.पाठः।

अहमप्यागमिष्यामि प्रद्रष्टुं निधनं रिपोः। गच्छ त्वं देवराजोऽपि शीघ्रं तत्रागमिष्यति[२०] ॥३९॥
हत्वा पापान् वधूं रत्नं द्वारकां नय हे सुत ![२१]। भित्त्वा चक्रेण तत्सेतुं वाग्वतीं त्वं विमोक्ष्यसि ॥४०॥
वाग्वतीप्रभवे स्नात्वा शतरुद्रं प्रणम्य च। राजकन्यां समालोक्य गच्छ पुत्र जयाय च ॥४१॥

स्कन्द उवाच

इत्युक्त्वा भगवान् कृष्णो देवकार्यहिते रतः। विकसत्पद्मनयनः पार्श्वस्थं मुनिमब्रवीत् ॥४२॥
सर्वं मद्वचनाद्ब्रूहि सहस्राक्षाय नारद। शत्रोस्ते निधनं[२२] द्रष्टुमायातव्यमितीह वै ॥४३॥
इत्याकर्ण्य वचो विष्णोर्गत्वा स्वर्गञ्च नारदः। तद्वार्तां कथयामास शक्राय त्वरितं तदा ॥४४॥
नारदस्य वचः श्रुत्वा मुमुदे मघवा भृशम्। आज्ञापयद्धि देवेभ्यो युद्धे संनहनाय च ॥४५॥
ततः पितुर्वचः श्रुत्वा झषध्वजो महामनाः। प्रययौ भ्रातृभिः सार्द्धं वाग्वतीप्रभवे गिरौ ॥४६॥
एकामवात्सीद्रजनीं स कामः[२३] स्नात्वा शिवे वाग्भवशम्बरे वै।
भक्त्या जयं प्रार्थयदीश्वरीं तां रत्नञ्च भार्यामपि हन्त ! लिप्सुः[२४] ॥४७॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये प्रद्युम्नोत्तरे रत्नहरणं नाम सप्तसप्तत्युत्तरशततमोऽध्यायः ॥१७७॥

---

म पनि शत्रु मरेको हेर्न आउनेछु। इन्द्र पनि तिम्रै पछि लागेर आउनेछन्। तिमी त्यहीँ जाऊ। हे छोरा ! पापी दैत्यहरूलाई मारेर बुहारी र रत्न द्वारका लैजाऊ। चक्रले हानेर बाँधलाई भत्काई वाग्वतीलाई पनि बगाइदेऊ। वाग्वतीको उत्पत्तिस्थान अर्थात् वाग्द्वारमा स्नान गर। शतरुद्रलाई नमस्कार गर र राजकन्याहरूलाई हेरेर विजयका निमित्त प्रस्थान गर ॥३९-४१॥

कार्तिक स्वामीले भन्नुभयो – यति भनेर देवताको हितका लागि तत्पर हुनुभएका भगवान् कृष्णले फुलेको कमलजस्तो हँसिलो आँखा पार्दै नजिकै बसेका नारदऋषिलाई भन्नुभयो – हे नारदमुनि ! मेरो सबै कुरा लगेर इन्द्रलाई भन – तिम्रो शत्रुको मृत्यु हेर्न तुरुन्त तिमी यहाँ आऊ भन्ने मेरो सन्देश इन्द्रलाई सुनाऊ ॥४२-४३॥

यस्तो विष्णुको वचन सुनेर नारद तुरुन्त स्वर्गमा गए र सबै वृत्तान्त उनले इन्द्रलाई बताए। नारदको कुरा सुनेर इन्द्र अत्यन्त प्रसन्न भए। युद्धको तयारीका निमित्त उनले देवताहरूलाई आदेश दिए। बाबुको भनाइ सुनेर महामना प्रद्युम्न आफ्ना भाइहरूलाई साथमा लिई वाग्वती उत्पत्ति भएको पर्वत अर्थात् वाग्द्वारमा गए ॥४४-४६॥

प्रद्युम्न एक रात वाग्द्वारको जलमा स्नान गरेर त्यहाँ बसे। भक्तिपूर्वक रत्न र भार्यालाई प्राप्त गर्ने कामना मनमा लिएर विजयको चाहनाले उनले ईश्वरीको आराधना गरे ॥४७॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्ड नेपालमाहात्म्यको प्रद्युम्नोत्तरमा रत्नहरणनामक एकसय सतहत्तरौँ अध्याय पूरा भयो।

---

२०. देवराजोऽपि तत्रैव गच्छ त्वमागमिष्यति, इति न.सं.पु.पाठः।
२१. नीयतां सुत, इति न.सं.पु.पाठः।
२२. ते शत्रोर्निधनम्, इति न.सं.पु.पाठः।
२३. कामोऽप्यवात्सीद्रजनीं समेकाम्, इति न.सं.पु.पाठः।
२४. रत्नञ्च भार्याञ्च हृदा चिकीर्षुः, इति न.सं.पु.पाठः।

# अष्टसप्तत्युत्तरशततमोऽध्यायः

## वाग्वत्यै वरप्रदानम्

### स्कन्द उवाच

प्रद्युम्नो गिरिकन्दरे कुसुमिते भक्त्या भवानीं वने
स्नात्वा तां[१] खलु वाग्वतीसुकमले दध्यौ परां कुम्भज।
निर्देहोऽपि च कामिनां मनसिजो ह्याध्याय तां मानसे
वाक्कायोत्तममानसैः स्तुतिवरैर्जप्योपहारैर्मुदा ॥१॥
सन्तुष्टा वाग्वती तस्मिँस्तद्भक्तिं प्रेक्ष्य तत्क्षणात्। तद्यामिन्यवशेषे सा चाञ्जसा मुमुदे भृशम् ॥२॥
ततो वागीश्वरी देवी सर्वाभरणभूषिता। विनिर्ययौ जलात्तूर्णं मालां पुस्तं च बिभ्रती[२] ॥३॥
ईप्सितार्थप्रदा गौरी स्मितानना त्रिलोचना। व्याजहार वचो देवी प्रद्युम्नाय शिवा मुने ॥४॥

### वाग्वत्युवाच

अवश्यं लप्स्यते काम ! दिव्यं रत्नं च तां प्रियाम्[३]। हनिष्यसि ह्यवश्यं त्वं दानवान् युद्धदुर्मदान् ॥५॥
शृणु त्वं मद्वचः काम ! येन जयमवाप्स्यसि[४]। आदौ दितिसुता वत्स ! नावमान्याः कदापि ते ॥६॥
ब्रह्मणो वरदानेन दानवा वरदर्पिताः। तपःक्षीणा भयेयुस्ते जानीहि दर्पकाऽधुना ॥७॥
शङ्खासुरो महासेतुं रक्षन्नस्ति[५] सदा रहः। हन्तव्यः प्रथमं सोऽपि शङ्खस्वनो महाबली ॥८॥

---

## अध्याय – १७८

### वाग्वतीलाई वरप्रदान

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! फूलै फूलले भरिएका पहाडको कन्दरामा प्रद्युम्नले भक्तिपूर्वक वाग्वतीको जलमा स्नान गरेर हृदयमा पूर्ण प्रेम लिई वचन, शरीर र मनले स्तुति, पूजा र ध्यान, जप तथा तपस्या गर्दै देवीको आराधना गरे कामीजनका हृदयमा अमूर्त रूपले रहने कामदेव त्यसबेला प्रद्युम्नका रूपमा मूर्त भएर आफ्नी प्रेयसी प्रभावतीलाई मुटुभित्र राखी उनले भगवतीको आराधना गरेका थिए। प्रद्युम्नको भक्ति देखेर वाग्वती तुरुन्त सन्तुष्ट हुनुभयो। त्यसै रातको अन्तिम प्रहरमा उहाँ अत्यन्त प्रसन्न हुनुभयो। त्यसपछि सबै गहनाले सिँगारिएकी, माला र पुस्तक लिएकी वाग्वती पानीबाट तुरुन्त बाहिर निस्कनुभयो। भक्तले चाहेबमोजिमको विषय प्रदान गर्नुहुने गोरो वर्ण भएकी, हँसिलो अनुहार लगाएकी र तीनवटा आँखा भएकी वाग्वतीले प्रद्युम्नलाई भन्न लाग्नुभयो ॥१–४॥

वाग्वतीले भन्नुभयो – हे कामदेव ! तिमीले अवश्य नै रत्न, विजय र पत्नी प्राप्त गर्नेछौ। तिमीले युद्धमा उन्मत्त भएका ती दानवहरूलाई अवश्य मार्नेछौ। हे कामदेव ! जे गर्दा तिमीले विजय पाउँछौ त्यो कुरा सुन। हे बाबु ! तिमी कहिल्यै पनि राक्षसहरूलाई हेलाको दृष्टिकोणले अर्थात् यिनीहरूले के गर्न सक्छन् भनेर नहेप। ब्रह्माको वरले गर्दा ती दानवहरू उन्मत्त भएका छन्। हे प्रद्युम्न ! अब तिनीहरूको तपस्या क्षीण भएको छ भन्ने कुरा बुझ। शङ्खासुर राक्षसले विशाल पुल र बाँधको रक्षा गरेर एकान्तमा बसेको छ। सर्वप्रथम तिमीले महाबली शङ्खको जस्तो आवाज उच्चारण गर्ने त्यस राक्षसलाई मार्नुपर्छ ॥५–८॥

---

१. संस्नात्वा, इति न.सं.पु.पाठः।
२. मामापुस्तकबिभ्रती, इति न.सं.पु.पाठः।
३. रत्नञ्जयञ्च ते प्रियाम्, इति न.सं.पु.पाठः।
४. जयं लभिष्यसि, इति न.सं.पु.पाठः।
५. रक्षति स्म, इति न.सं.पु.पाठः।

ततो दानासुरो वीर ! हन्तव्यो यत्नतः पुनः। मायावी मायया क्रोधी कूटयुद्धविशारदः ॥९॥
शक्रतापो महावीरो हन्तव्यो युधि दुर्मदः। मायावी सर्वयुद्धज्ञो ब्रह्मणो वरदर्पितः ॥१०॥
आस्ते कूर्मो[६] महावीरो रुद्रवरप्रदर्पितः। तत्संवरेण सञ्जाता कलुषीकृतविग्रहा[७] ॥११॥
त्वया स हन्यतां पुत्र ! यत्नपूर्वं हि कच्छपः। न म्रियते जले कूर्मः कदापि वर्द्धते बलम् ॥१२॥
स्थले भेत्स्यसि सत्पुत्र ![८] चक्रेण सूर्यवर्चसा। कृष्णस्ते जनको वत्स ! लोकोद्धरणहेतुकः ॥१३॥
ततः कूर्मं जलापाये तेन चक्रेण दर्पक। हनिष्यसि महाकायं शैलोपमं सुदुर्लभम् ॥१४॥
ग्रहीष्यसि ततो रत्नं तस्य कुक्षिगतं पुनः। हते दैत्ये विराधे च देवर्षिसिद्धसंसदि ॥१५॥
आगमिष्यति दैत्योऽत्र विलाच्चन्दनभूभृतः। सूर्यकेतुसुतां द्रष्टुं विरहातुरमानसः ॥१६॥
न प्रकटय देहं स्वं योद्धुं प्रेक्ष्य प्रियाञ्च ताम्। शङ्खे जीवति यावत्ते न भवेत् काङ्क्षितो जयः[९] ॥१७॥
हते दैत्ये मिलिष्यामि गङ्गायां सत्वरं स्मर[१०]। विष्ण्वङ्गसम्भवायाञ्च त्रिपथाया[११] स्वयं मुदा ॥१८॥

स्कन्द उवाच

इत्याकर्ण्य वचो देव्याः प्रद्युम्नो हि महामनाः। स्तोतुं प्रचक्रमे भक्त्या वाग्वतीं त्रिविधेरितैः ॥१९॥

प्रद्युम्न उवाच

वागीश्वरि ! महाभागे वाग्विभूतिप्रदे शुभे। त्रैलोक्यवन्दिते देवि नमामि चरणौ तव ॥२०॥
सर्वेशि वाग्भवे पुण्यवागीशे वाक्प्रदे शिवे। वाङ्मनोऽगोचरे मातस्त्वदङ्घ्रब्जे नमाम्यहम् ॥२१॥

---

त्यसपछि हे वीर ! तिमीले खूब प्रयास गरेर वीर दानासुर दैत्यलाई मानुपर्छ। त्यो माया सिर्जना गर्न अत्यन्त सिपालु छ, रिसाहा छ र कूटयुद्धमा निपुण छ। त्यसपछि ब्रह्माजीको वरले गर्दा उन्मत्त भएको, युद्धकलामा कुशल महावीर मायावी इन्द्रदमनलाई तिमीले युद्धमा मार्नुपर्छ। त्यस्तै शिवजीबाट वर प्राप्त गरेर उन्मत्त भएको महावीर कूर्म दानव छ। त्यसले मलाई सधैँ मैलो तुल्याएको छ, अर्थात् ममाथि नै मलमूत्र आदि सबै फ्याँकिदिन्छ। हे बाबु ! तिमीले त्यो कच्छपासुरलाई पनि निकै प्रयास गरेर मार्नुपर्छ। त्यो कच्छप पानीमा मर्दैन। त्यहाँ त्यसको बल झन् बढेर आउँछ। त्यसैले तिमीले सूर्यको जस्तो तेज भएको चक्र हानेर मेरो बाँध फोड्नुपर्छ। हे बाबु ! तिम्रा बाबु कृष्णले संसारको उद्धार गर्नुहुनेछ ॥९–१३॥

हे प्रद्युम्न ! पानी सुकेपछि त्यो चक्रले पहाडजस्तै ठूलो शरीर भएको कच्छपासुरलाई मार्नेछौ। त्यो विराद् नाम गरेको दैत्य मरेपछि तिमीले देवता, सिद्धि र ऋषिको अगाडि काखीमा रहेको रत्नलाई ग्रहण गर्नेछौ। त्यसैबखत चन्दनपर्वतको गुफाबाट सूर्यकेतु राजाकी छोरीलाई हेर्न विरहले पीडित त्यो दैत्य आउनेछ ॥१४–१६॥

हे कामदेव ! युद्धका लागि आफ्नो शरीरलाई पहिले नदेखाईकन त्यहाँ तिमीले पत्नीलाई हेर्नू। शङ्खासुर बाँचेसम्म तिम्रो इच्छा कसैगरी पूर्ण हुनेछैन। त्यो दैत्य मरेपछि म विष्णुको अङ्गबाट उत्पन्न भएकी गङ्गामा गएर मिल्नेछु ॥१७–१८॥

कार्तिक स्वामीले भन्नुभयो – देवीको यस्तो कुरा सुनेर महामना प्रद्युम्नले तीन किसिमका भक्तिद्वारा वाग्वतीको स्तुति गरे ॥१९॥

प्रद्युम्नले भन्नुभयो – हे वागीश्वरी ! वाणी र ऐश्वर्यलाई दिने हे भगवती ! तीनै लोकले प्रणाम गरिएकी हे देवी ! हजुरको पाउमा नमस्कार गर्दछु। सबैकी स्वामिनी ! वाणीबाट पैदा भएकी, पवित्र वाणीकी अधिष्ठाता, विद्या दिने, वचन र मनले ठम्याउन नसकिने हे आमा ! हजुरको चरणरूपी कमलमा म नमस्कार गर्दछु ॥२०–२१॥

---

६. आसीत्कूर्मः, इति न.सं.पु.पाठः।
७. नित्योऽहं कलुषीकृतविग्रहः, इति न.सं.पु.पाठः।
८. ततो भेत्स्यसि संभूत ! इति न.सं.पु.पाठः।
९. लभेत्काङ्क्षितं जयम्, इति न.सं.पु.पाठः।
१०. गमिष्यामि गङ्गाया मिलनं स्मर, इति न.सं.पु.पाठः।
११. त्रिस्रोताया, इति न.सं.पु.पाठः।

भक्तानां वरदे मातर्भक्तिगम्ये हि वाग्वति। भक्तिहीनैः सुरैश्चापि ह्यगोचरे नमोऽस्तु ते ॥२२॥
त्रैलोक्यपावनायार्ये चावततार वाग्वती। जलरूपेण देवीह हरमुखान्नमोऽस्तु ते ॥२३॥
सरस्वति महाभागे दुःखं संसारसंसृतिम्। विनाशय स्वभक्तानां त्वदङ्घ्र्यब्जे नमाम्यहम् ॥२४॥
वाणि ब्रह्मपरे देवि गोचरे ब्रह्मवादिभिः। भक्तैस्तैश्च नरैर्वापि[१२] ब्रह्मेश्वरि नमोऽस्तु ते ॥२५॥
सर्वभूतानि रुद्राणि पञ्चतत्त्वैर्विधायिनि[१३]। स्वकर्मवशगानाञ्च[१४] तारिणीशे नमोऽस्तु ते ॥२६॥
जनान् संस्नाप्य तोयैः स्वैः स्वच्छकल्लोलपङ्क्तिभिः। तारिणि दुःखसंसारादज्ञानामपि ते नमः[१५] ॥२७॥
वाग्वति वाग्भवे शम्भोर्भवानि भवतारिणि। भवेश्वरि महादेवि भवबन्धे नमोऽस्तु ते ॥२८॥
वागीश्वरि शिवे दुर्गे सर्वेप्सितवरप्रदे। सिद्धं कार्यञ्च जानामि त्वत्पादपद्मदर्शनात्[१६] ॥२९॥
यदैवालोकितं[१७] देवि त्वदङ्घ्रिकमलद्वयम्। सिद्धं मनोरथं मेने तदैव वाग्भवे शिवे ॥३०॥
अवश्यञ्च करिष्यामि भगवत्या वचो हि यत्। त्वत्प्रसादाद्धनिष्यामि शक्रतापञ्च सानुजम् ॥३१॥

स्कन्द उवाच

आकर्ण्य संस्तुता तेन प्रद्युम्नेनाशु वाग्वती। व्याजहार शुभं वाक्यं सन्तुष्टा स्तुतिभिः खलु ॥३२॥

वाग्वत्युवाच

स्तवेनानेन ते काम ![१८] त्रिविधेन प्रतोषिता। अधुना भवते भक्त्या दास्ये वरं स्तवाय च ॥३३॥
यश्च पठेत्स्तवं चेमं सङ्कटे वा कुतूहले[१९]। प्रीत्यर्थं मेऽथवा भक्त्या तस्य पुण्यफलं शृणु ॥३४॥

---

भक्तलाई वर दिने र भक्तिलाई मात्र जान्न सकिने हे वाग्वती आमा ! भक्ति नभएका देवताहरूले पनि जान्न नसकिने भएकी हे देवी ! हजुरलाई नमस्कार छ। हे आर्या ! तीनै लोकलाई पवित्र तुल्याउनका निमित्त हजुरले वाग्वतीका रूपमा अवतार लिनुभएको छ। शिवजीको मुखबाट निस्किएर जलको रूपले बग्ने हे देवी ! हजुरलाई नमस्कार छ। हे देवी ! हे सरस्वती ! हजुरले सम्पूर्ण भक्तका सांसारिक दुःखलाई हरण गर्नुहुन्छ। हजुरको चरणरूपी कमलमा म नमस्कार गर्दछु। हे वाणी ! ब्रह्मज्ञाताहरूले मात्र पत्तो पाउन सक्ने हे ब्रह्माणी देवी ! हजुरलाई भक्तिभाव भएका देवता र मानिसले मात्र पाउन सक्छन्। हे महेश्वरी ! हजुरलाई नमस्कार छ। सम्पूर्ण प्राणीहरूलाई पञ्चतन्मात्राका रूपमा सृष्टि हे रुद्राणि ! आफ्नो कर्मको अधीनमा रहेका मानिसहरूलाई तार्ने हे ईश्वरी ! हजुरलाई नमस्कार छ। अज्ञानी मानिसहरूलाई पनि पवित्र तरङ्ग भएको जलले स्नान गराएर दुःखरूपी संसारबाट तार्ने हे भगवती ! हजुरलाई नमस्कार छ। वाग्द्वारबाट पैदा भएकी हे वाग्वती ! हे भवानी ! हे भवतारिणी ! हे भवेश्वरी ! हे महादेवी ! हे संसारलाई बन्धनमा पार्नुहुने देवी ! हजुरलाई नमस्कार छ ॥२२–२८॥

हे वाणीकी अधिष्ठात्री देवी ! हे शिवे ! हे दुर्गे ! सम्पूर्ण इच्छलाई पूर्ण गर्ने हे देवी ! हजुरको पाउको दर्शन पाएको हुँदा मैले अब आफ्नो कार्य सफल भयो भन्ने ठानेको छु। हे वाग्वती ! हे पार्वती ! जब मैले हजुरका दुई पाउको दर्शन पाएँ, त्यसबेला मैले आफ्नो मनोरथ सिद्ध भयो भन्ने ठानेको थिएँ। हे वाग्वती ! हे शिवा ! भगवतीको वचनलाई अवश्य पालना गर्नेछु, हजुरको अनुग्रहले भाइका साथै महेन्द्रदमनलाई मार्नेछु ॥२९–३१॥

कार्तिक स्वामीले भन्नुभयो – प्रद्युम्नले स्तुति गरेको सुनेर वाग्वती अत्यन्त प्रसन्न हुनुभयो र उहाँले प्रद्युम्नलाई तुरुन्त भन्नुभयो ॥३२॥

वाग्वतीले भन्नुभयो – तीनै किसिमको भक्तिपूर्वक गरेको यस स्तुतिद्वारा अहिले म अत्यन्त प्रसन्न भएको छु। यो स्तुतिलाई पनि म अहिले नै वर दिन्छु। जसले सङ्कट परेको बेला अथवा कुनै कौतूहलपूर्ण समयमा प्रेमपूर्वक भक्तिभावले यो स्तोत्र पढ्छ, त्यसको पुण्य फल बताउँछु, सुन ॥३३–३४॥

---

१२. नो नरैर्भक्तिभिस्तैश्च, इति न.सं.पु.पाठः।
१३. सर्वभूतानि रुद्राणि पञ्चात्मकैर्विधायिनी, इति न.सं.पु.पाठः।
१४. स्वकर्मवशगाँश्चापि, इति न.सं.पु.पाठः।
१५. ...ज्ञानिनोऽपि ते नमः, इति न.सं.पु.पाठः।
१६. जानामि सिद्धकार्यं मे त्वच्चरणप्रदर्शनात्, इति न.सं.पु.पाठः।
१७. यदैव दर्शितम्, इति न.सं.पु.पाठः।
१८. कामाहम्, इति न.सं.पु.पाठः।
१९. समुत्सुके, इति न.सं.पु.पाठः।

शत्रुभिर्नाभिभूयेत सङ्ग्रामे विजयी भवेत्। असाध्यं साधयेत्कार्यं पठनाद्धि विकिल्विषः ॥३५॥
सर्वतीर्थेषु यत्स्नात्वा लभेत तत्फलं हि सः। गवां लक्षफलं प्राप्य रुद्रलोकं व्रजेत्परम् ॥३६॥

स्कन्द उवाच

इत्युक्त्वाऽन्तर्दधे तोये प्रत्यक्षा वाग्वतीश्वरी। उपदिश्य वरं तस्मै स्तवाय च घटोद्भव ॥३७॥
ततो देवीं परिक्रम्य स्तुतिभिर्दर्पकः पुनः। प्रणम्य दण्डवद्भूमौ शिवकूटाचलं ययौ ॥३८॥
प्रणम्य शिरसा भक्त्या शतरुद्रञ्च दर्पकः। सुवरं काङ्क्षितं तत्र तस्थौ हि प्रार्थयन्मुने ॥३९॥
तस्मिन्काले विलाद् दैत्यश्चन्दनाचलगह्वरात्। विनिःसृत्याशु कामार्तस्तत्रााययौ हि निर्जनः ॥४०॥
सान्त्वयामास दैत्योऽसौ तां सखीवचनेन वै। सूर्यकेतुसुतां शैले बहुसम्मानपुर्वकम्[२०] ॥४१॥
नैवं मेनेऽसुरं देवी सूर्यकेतुसुता तदा। व्रीडायुक्ता हि नम्रास्या व्यलोकयत्[२१] सखीं रुषा ॥४२॥
सुलोचना सखी दैत्यं कुशला समबोधयत्। वाचा मधुरया दैत्यं मधुरं कुर्वती मुहुः[२२] ॥४३॥
मा भव दूषको राजन् ! कन्यायास्त्वं कदाचन। भवसि यदि कामार्तो लोकनिन्दां गमिष्यसि ॥४४॥
अवश्यं नृपतिस्तुभ्यमेनां कन्यां प्रदास्यति। ततो यदृच्छया राजन् ! कामयतु यथा सुखम् ॥४५॥
शक्रतापस्ततोऽगस्त्य ! तथ्यं कृत्वाशु तद्वचः। प्रत्याययौ हि कामार्तो विरहातुरमानसः ॥४६॥
सूर्यकेतुसुतां प्रेक्ष्य रूपातिशालिनीं स्मरः। हर्षोत्फुल्लमना भूत्वा परिणेतुं[२३] मनो दधे ॥४७॥
दैत्यं प्रेक्ष्य रुषाविष्टो हन्तुं मनो दधे पुनः। समक्षे दर्पको वज्रं तादृशं विरहातुरम् ॥४८॥

---

शत्रुबाट त्यसको पराजय हुँदैन, युद्धमा विजयी हुन्छ, पढ्नाले मात्रै पनि सिद्ध नहुने सबै कामहरू सिद्ध हुन्छन् र पापबाट मुक्त हुन्छन्। सबै तीर्थमा स्नान गर्दा पाइने फल त्यसले पाउँछ। एक लाख गाई दान गरेको फल प्राप्त गरेर त्यो परम रुद्रलोकमा जान्छ ॥३५–३६॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! यति भन्दै प्रद्युम्नलाई र उनले गरेको स्तुतिलाई तुरुन्त वर दिएर प्रत्यक्षरूपमा देखापरेकी वाग्वती देवी पानीमा अन्तर्धान हुनुभयो। त्यसपछि अनिरुद्धले फेरि पनि स्तुति गरेर देवीको परिक्रमा गरे। अनि भूमिमा लम्पसार परी दण्डवत् प्रणाम गरेर शिवकूटपर्वततिर गए। शिरले भक्तिपूर्वक शतरुद्रलाई नमस्कार गरेर प्रद्युम्न प्रार्थना गर्दै आफूले चाहेको वर मागेर उभिए ॥३७–३९॥

त्यसैबेला चन्दनपर्वतको गुफाबाट कामवासनाले पीडित भएको दैत्य एक्लै निस्किएर त्यहाँ आयो। त्यस दैत्यले सखीको माध्यमबाट सूर्यकेतुकी छोरीलाई त्यस पहाडमा बडो सम्मानका साथ फकायो। जति फकाए पनि लाजले मुन्टो निहुरो लगाएर बसेकी सूर्यकेतुकी छोरीले त्यस राक्षसलाई स्वीकार गरिनन् र सखीलाई रीसले हेरिन् ॥४०–४२॥

सुलोचना नाम भएकी कुशल सखीले मीठो वचन बोलेर दैत्यलाई बुझाउन लागिन्। हे राजन् ! हजुर कुनै हालतमा पनि कन्याका लागि दोषी नबन्नुहोस्। तपाईं कामवासनाले पीडित हुनुभयो भने तपाईंको समाजमा ठूलो निन्दा हुनेछ। राजाले यी कन्या अवश्य हजुरलाई दिनेछन्। त्यसपछि इच्छाबमोजिम भोग गर्नुहोला ॥४३–४५॥

हे अगस्त्य मुनि ! महेन्द्र दमनको त्यो कुरा उचित सम्झेर कामवासनाले पीडित भए तापनि मनमा विरह लिएर त्यो दैत्य फर्कियो। प्रद्युम्नले पनि अतिशय राम्री सूर्यकेतुकी छोरीलाई देखेर मन अत्यन्त प्रफुल्ल भएको हुँदा विवाह गर्ने विचार गर्नुभयो। प्रद्युम्नले अघिल्तिर विहरले आतुर भएको त्यस दैत्यलाई देखेर मार्ने विचार गर्नुभयो ॥४६–४८॥

---

२०. बहुमानपुरः सरम्, इति न.सं.पु.पाठः।
२१. चापश्यद्धि, इति न.सं.पु.पाठः।
२२. मान्या मधुरयन्मुहुर्मुहुः, इति न.सं.पु.पाठः।
२३. विवाहितुम्, इति न.सं.पु.पाठः।

भ्रात्रा सार्धं[२४] सुकुसुमशरः सेतुबन्धं दृढन्तं
यानेनापि द्रुतमभिययौ यत्र शङ्खो ह्यवात्सीत्[२५] ।
प्रोद्यम्यार्यः खलु रथपदं सूर्यसङ्काशभानुं
सेतुं प्राप्तः क्षणमपि तदा यानतो ह्यम्बराद् हि[२६] ॥४९॥

तत्रायगुश्च त्रिदशा हि यानैर्द्रष्टुञ्च युद्धं स्मरदैत्ययोर्वै ।
सिद्धर्षयस्ते पुरुहूतमुख्याः कृष्णं पुरोधाय पुरन्दराद्रिम् ॥५०॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये वाग्वतीवरदानं
नामाष्टसप्तत्युत्तरशततमोऽध्यायः ॥१७८॥

---

**प्रद्युम्न भाइलाई समेत सूर्यको जस्तो तेज भएको रथमा राखेर शङ्खासुर जहाँ बस्थ्यो, त्यसै सेतुबन्धमा गए। आर्यप्रवर प्रद्युम्न सूर्यसमान तेजिलो चक्र हामा लिएर एक क्षणमा नै विमानद्वारा यात्रा तय गरी आकाशबाट सिधै सेतुबन्धमा ओर्लिएका थिए ॥४९॥**

**प्रद्युम्न र इन्द्रदमन नामक दैत्यका बीच हुने युद्ध हेर्नका लागि सिद्धहरू, ऋषिहरू, इन्द्रआदि गरेका देवताहरू सबै कृष्णलाई अगाडि लगाएर विमानमा चढी त्यस पर्वतमा आए ॥५०॥**

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्ड नेपालमाहात्म्यको प्रद्युम्नोत्तरमा वाग्वतीलाई वरप्रदाननामक
एकसय अठहत्तरौं अध्याय पूरा भयो।

---

२४. **स भ्राता वै, इति न.सं.पु.पाठः।**

२५. **शङ्खासुरस्थ, इति न.सं.पु.पाठः।**

२६. **च तद्यानगन्ताम्बराद्धि, इति न.सं.पु.पाठः।**

# ऊनाशीत्युत्तरशततमोऽध्यायः

## शङ्खासुरवधः

### स्कन्द उवाच

शङ्खालयगिरेमूर्ध्नि चावतेरुर्विमानतः। प्रद्युम्नप्रमुखाः शीघ्रमुद्यच्छस्त्रास्त्रपाणयः ॥१॥
सेतुं विदारयामासुर्दृढबन्धञ्च यादवाः। धनुषां कोटिभिः पद्भिः सिंहनादं विनद्य च ॥२॥
शङ्खस्य सेवकोऽपश्यत्तादृशान् यादवान् तदा[1]। बिलं प्रविश्य तत्सर्वं शङ्खाय समवर्णयत् ॥३॥
आकर्ण्य वचनं[2] शङ्खो विलाद्विनिर्ययौ रुषा। क्व तिष्ठन्तीति पापास्ते चासिपाणिरथो ब्रुवन् ॥४॥
अमर्षैः पूरितः शङ्खो यादवान् प्रेक्ष्य सत्वरम्। समाह्वयत्स्वकं सैन्यञ्चावोचद्यादवान् वचः ॥५॥

### शङ्ख उवाच

रे रे पापा दुराचारा निधने यत्र चोद्यताः। बद्ध्वा पाशेन दैवेन स्थापयिष्यामि वोऽधुना[3] ॥६॥
मद्बलै रक्षितः सेतुः कथं विदारितः पदैः। देवैरपि न साध्यं तत् कृतं सेतुविदारणम्[4] ॥७॥
के क्षुद्रबुद्धयो यूयं वदत कस्य चात्मजाः[5]। मद्धस्तपातनैः सद्यो गमिष्यथ यमालयम् ॥८॥

### प्रद्युम्न उवाच

यो हन्ता दानवानाञ्च[6] युष्मत्कुलनिषूदनः। संह्लादस्य तथान्येषां हिरण्यपदवाच्ययोः[7] ॥९॥
कालयवनयोर्हन्ता मगधाधिपकंसयोः[8]। अनुह्लादमुरान्धानां हन्तुस्ते वयमात्मजाः[9] ॥१०॥
पाप ! शम्बरहन्ताहं[10] प्रद्युम्न इति विश्रुतः। हत्वा त्वां सानुजञ्चाद्य मोदयिष्ये पुरन्दरम् ॥११॥

---

## अध्याय – १७९

### शङ्खासुरको वध

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! प्रद्युम्न आदि यादवहरू तुरुन्तै हतियार उज्याउँदै शङ्खासुर बसेको पहाडका टकुरामा विमानबाट ओर्लिए। यादवहरूले सिंहनाद गर्दै धनुषका टुप्पाले र गोडाले बलियो बन्धन भएको बाँधलाई फोरिदिए र सिंहनाद गरे। त्यसपछि शङ्खासुरको नोकरले तिनीहरूलाई देख्यो र ऊ ओडारभित्र पस्यो र शङ्खासुरलाई सबै कुरा बतायो। यादवहरूले आफूमाथि आक्रमण गर्न लागेको सुनेर हातमा तरवार लिई ती पापीहरू कहाँ छन् भन्दै शङ्खासुर रिसाएर त्यस प्वालबाट तुरुन्त बाहिर निस्कियो। रिसाएको शङ्खासुरले यादवहरूलाई देख्यो र आफ्ना फौजलाई बोलायो। अनि उसले यादवहरूलाई भन्यो ॥१–५॥

शङ्खासुरले भन्यो – हे पापी दुष्ट हो ! तिमीहरू यहाँ मर्नका निमित्त तयार भएकी छौ कि कसो ? दैवले डोरीले बाँधेर आज तिमीहरूलाई यहाँ ल्याएछ। अब म तिमीहरूलाई यहीं बाँधेर राख्नेछु। मेरा फौजले रक्षा गरेको त्यो बाँध किन फुटल्यौ ? हे पापी हो ! देवताले पनि भत्काउन नसक्ने त्यो बाँध तिमीहरूले भत्कायौ। क्षुद्रबुद्धि भएका तिमीहरू को हौ ? कसका सन्तान हौ ? मलाई भन। मेरो हातको प्रहारले नै तिमीहरू तुरुन्तै यमलोक जाँदैछौ ॥६–८॥

प्रद्युम्नले भन्नुभयो – तिम्रा कुलका दानवहरूलाई जसले बारम्बार मार्ने गरेको छ, हिरण्याक्ष र त्यस्तै सम्राट् हिरण्यकशिपु आदिलाई जसले माऱ्यो, कंस, जरासन्ध, कालयवन, अनुह्लाद तथा मुर दैत्यलाई जसले समाप्त पाऱ्यो, हामीहरू त्यसैका छोरा हौं। हे पापी ! शम्बर नाम गरेको दैत्यलाई मार्ने प्रद्युम्न भनेको मै हुँ। आज तेरो भाइसँगै तँलाई समेत मारेर इन्द्रलाई खुसी तुल्याउनुपरेको छ ॥९–११॥

---

१. ततः शङ्खासुरस्याशु तादृशान् समवर्णयत्, इति न.सं.पु.पाठः।
२. तद्धतम्, इति न.सं.पु.पाठः।
३. चात्रैवाद्यानीता खलु, इति न.सं.पु.पाठः।
४. अपि देवैरसाध्यं तद् विदारिता स्थ किल्विषाः, इति न.सं.पु.पाठः।
५. कस्यात्मजा वदन्तु मे, इति न.सं.पु.पाठः।
६. दानवान् शश्वद्, इति न.सं.पु.पाठः।
७. हिरण्याक्षं तथा चान्यं संह्लादं कशिपुं तथा, इति न.सं.पु.पाठः।
८. हन्ता कंसं जरासन्धं कालञ्च यवनं पुनः, इति न.सं.पु.पाठः।
९. अनुह्लादं मुरञ्चान्धं स्युर्हन्तुरात्मजा वयम्, इति न.सं.पु.पाठः।
१०. हन्ताहं शम्बरं पाप !, इति न.सं.पु.पाठः।

शङ्ख उवाच

हन्ता मम गुरोर्हि त्वं प्रद्युम्न इति विश्रुतः। पोषकध्रुग्यतः पाप ! कृतघ्नोऽसि च पापभाक् ॥१२॥
अहोभाग्यमहो मेऽद्य इहानीताश्च शत्रवः। स्वरक्षकस्य हन्तारो दैवेनाबध्य किल्विषैः ॥१३॥
अद्यैवाहं गमिष्यामि वैरान्तरं हि मद्गुरोः। हत्वा त्वां सानुजं पाप मोदयिष्ये च दानवान् ॥१४॥

स्कन्द उवाच

इत्युक्त्वा सहसा शङ्खो ज्यायामारोपयच्छरम्। समुत्सार्य शरं गाढं चिक्षेप दर्पकं प्रति ॥१५॥
सहस्रसङ्ख्यकान् बाणान् शङ्खासुरो रुषान्वितः। उद्दिश्य केवलं कामं चिक्षेप लघुहस्तकः ॥१६॥
ततः ससैन्यः[११] शङ्खश्च समुद्दिश्याशु यादवान्। समन्ततश्च सम्भूय शरासारान् ववर्ष च ॥१७॥
तद्बाणेनार्दितः कामो विह्वलाङ्गोऽभवद् भृशम्। पपुश्च रुधिरं बाणाः प्रद्युम्नाङ्गेषु सर्वतः ॥१८॥
विह्वलाङ्गं च तं प्रेक्ष्य[१२] यादवाः युद्धदुर्मदाः। ववृषुश्च शरासारान् दैत्यसैन्योपरि ध्रुवम् ॥१९॥
वीरो बलो रुषाविष्टः शत्रुभयङ्करोऽसुरान्। हलेनाशु समाकृष्य ताडयन्मुसलेन तान् ॥२०॥
गदो हि गदया दैत्यान् प्रजघान सहस्रशः। व्यनदत्सिंहनादञ्च प्रोद्दिश्यावयवान् भृशम् ॥२१॥
परिघेनाशु साम्बस्तान् जघान लघुहस्ततः। प्रक्षिपन् चात्र शस्त्राणि चोद्दिश्य तत्पदानि च[१३] ॥२२॥
ततोऽद्रिशिखरे तोये दैत्याः पेतुः समन्ततः। विच्छिन्नशिरसः केचिच्छिन्नपादकरास्तथा[१४] ॥२३॥
सटङ्कारं धनुः कृत्वा शार्ङ्गं तत्[१५] कुसुमायुधः। शरं ज्यायां समारोप्य[१६] शङ्खं हन्तुं समुद्यतः ॥२४॥

---

शङ्खासुरले भन्यो – मेरा गुरुलाई मार्ने प्रद्युम्न भनेको तँ रहिछस्, आफ्ना पोषकलाई मार्ने तँ कृतघ्न होस्, पापी होस्। आज मेरो ठूलो भाग्य रहेछ। शत्रुहरू आफैँ यहाँ आइपुगे। आफ्नो रक्षकलाई जसले मार्‍यो, त्यसै पापले गर्दा दैवले त्यसलाई बाँधेर यहाँ ल्यायो। हे पापी ! भाइसमेत तँलाई मारेर आजै गुरुको वैरभावको साधना गर्दछु। दानवहरूलाई खुसी तुल्याउँछु ॥१२-१४॥

कार्तिक स्वामीले भन्नुभयो – यति भनेर शङ्खासुरले तुरुन्त धनुषमा ताँदो चढायो। अनि प्रद्युम्नलाई ताकेर तीखो बाण हिर्कायो। शङ्खासुरले फूर्तिसाथ हजारौँ बाण खालि प्रद्युम्नलाई ताकेर छिट्येछिट्ये फ्याँक्यो। त्यसपछि शङ्खासुरले यादव र फौजहरूलाई समेत ताकेर भटपट् चारैतिरबाट जम्मा वृष्टि गर्‍यो। त्यसका बाणबाट पीडित भएको कामदेवको अङ्ग अत्यन्त जड भयो। बाणहरूले प्रद्युम्नको अङ्गमा पसेर चारैतिरबाट रगत पिए। विह्वल अङ्ग भएका प्रद्युम्नलाई देखेर युद्धमा सिपालु यादवहरूले दैत्यका फौजहरूमाथि आफ्ना बाणहरू बर्साए ॥१५-१९॥

वीर बलदेवले रिसाएर शत्रुलाई डर देखाउँदै हलाले तानेर मुसलले प्रहार गर्नुभयो। गदले पनि हजारौँ दैत्यहरूलाई सिंहनाद गर्दै गदाले ताकेर खूबसित हिर्काए। साम्बले हलुका हातले परिघ भन्ने हतियार लिएर अरू अस्त्रलाई हटाउँदै तिनीहरूको गोडामा ताकेर प्रहार गरे। त्यसपछि त्यसै पर्वतका टाकुरामा रहेको पानीमा चारैतर्फबाट दैत्यहरू पछारिए। कसैको शिर काटियो, कसैको हात काटियो। प्रद्युम्नले धनुषमा टङ्कार गरेर ताँदो चढाए र बाण जोडेर उनी शङ्खासुरलाई मार्न तयार भए ॥२०-२४॥

---

११. ततः शैन्यस्य, इति न.सं.पु.पाठः।
१२. तं विह्वलाङ्गिने प्रेक्ष्य, इति न.सं.पु.पाठः।
१३. क्षेपयँश्चापरानस्त्रान् चोद्दिश्य तत्पदान् भृशम्, इति न.सं.पु.पाठः।
१४. केचित्केचित्पादाः करास्तथा, इति न.सं.पु.पाठः।
१५. टङ्कारं च धनुः कृत्वा सारङ्गम्, इति न.सं.पु.पाठः।
१६. ज्यामारोप्याशुगं क्रोधात्, इति न.सं.पु.पाठः।

ततो व्योम्नि समुद्भूता चाकलेवरवाक् तदा। अवध्यः काम शस्त्रास्त्रैर्मल्लयुद्धं विनेति सः ॥२५॥
श्रुत्वेरितं वचो व्योम्नश्चाशरीरेण दर्पकः। शस्त्रास्त्राणि च सन्त्यज्य मल्लयुधि तमाह्वयत् ॥२६॥
आलोक्य पतितान् शङ्खो निःशेषेण च दानवान्। त्यक्त्वा शस्त्राणि कन्दर्पं हन्तुमुद्यम्य[१७] वेगवान् ॥२७॥
जघान मुष्टिना शङ्खः कामस्योरसि वै भृशम्। अपतद्दर्पकः सेतौ व्यथाविह्वलविग्रहः ॥२८॥
प्रद्युम्नं पतितं प्रेक्ष्य तमभिद्रुत्य यादवाः। शस्त्रास्त्रैर्गदया तीव्रं जघ्नुः शङ्खासुरं भृशम् ॥२९॥
समाकृष्य गदां शङ्खः साम्बहस्ताद्रुषाशु तान्। तानुद्दिश्याभिदुद्राव कृतान्त इव पापिनः ॥३०॥
सन्ताड्य यादवान् शङ्ख उद्भ्राम्य तां गदां रुषा। अपातयत् बलं कूटे गदापातेन विह्वलम्[१८] ॥३१॥
प्रद्युम्नस्तत्क्षणात् तत्र विनिवार्य[१९] व्यथां पुनः। जहाराशु किरीटं वै शङ्खासुरस्य शीर्षतः ॥३२॥
ततो युयुधतुस्तौ द्वौ परस्परजयैषिणौ। मुष्टिपादाहतैः क्रोधात्कामशङ्खौ महाहवे ॥३३॥
युयुधतुर्मिथस्तौ च बाहुयुद्धेन कोपनौ। चिक्षिपतु[२०]र्मिथस्तोये बाहुप्रहारतो मुहुः ॥३४॥
शङ्खस्तलेन कन्दर्पं शिरोदेशे जघान च। कामोऽपतज्जलेऽगस्त्य चोदतिष्ठत्पुनः स्मरः ॥३५॥
वीरः कामोऽद्रिकूटे तं पातयामास वै रुषा। दोर्भ्यां प्रगृह्य तत्पादौ यथा जीवं यमः क्षये[२१] ॥३६॥
आक्रम्य जठरे कामः शङ्खस्य च शिरो रुषा। जघान मुष्टिना गाढं कृतान्तः पापिनं यथा ॥३७॥
ततः शङ्खासुरोऽगस्त्य ! काममुष्टिप्रहारतः। ननादातिशयं तत्र शङ्खस्वनं व्यसुर्भृशम् ॥३८॥

---

त्यसैबेला आकाशमा अदृश्य शक्तिले भन्यो– हे प्रद्युम्न ! यो राक्षस मल्लयुद्धबाहेक अरु शस्त्र–अस्त्रले मर्दैन। प्रद्युम्नले आकाशवाणी सुनेर शस्त्रअस्त्र छोडिदिनुभयो र मल्लयुद्ध गर्न त्यस दैत्यलाई बोलाउनुभयो। शङ्खासुरले सारा दानवहरू भूमिमा पछारिएको देखेर शस्त्रअस्त्र छोडेर वेगसँग मुड्की बाँधी प्रद्युम्नसँग कुस्ती खेल्न गयो ॥२५–२७॥

शङ्खासुरले प्रद्युम्नको छातीमा बेसरी मुड्कीले हिर्कायो। त्यसको वेदनाले विह्वल भएर प्रद्युम्न बाँधमा पछारिनुभयो। प्रद्युम्न पछारिएको देखेर यादवहरू त्यहाँ आए। उनीहरूले शस्त्र, अस्त्र र गदाले शङ्खासुरलाई खूबसित हिर्काए ॥२८–२९॥

शङ्खासुरले रीसले साम्बको हातबाट गदा खोस्यो र यमराजले पापीहरूलाई जस्तै तिनीहरूलाई झम्टियो। रीसले शङ्खासुरले गदा घुमाएर यादवहरूलाई हिर्कायो। गदाका चोटले विह्वल भएर बलराम त्यसै पहाडको शिखरमा पछारिनुभयो। प्रद्युम्न त्यसैबखत मूर्छाबाट होसमा आउनुभयो। हत्त न पत्त उहाँले शङ्खासुरको शिरबाट मुकुट खोस्नुभयो ॥३०–३२॥

परस्पर जित्न चाहने ती दुई प्रद्युम्न र शङ्खासुर रिसाउँदै मुड्कीले, लात्तीले हानाहान गरेर त्यस महायुद्धमा लडे। तिनीहरू परस्पर रीसले कुस्ती खेले। बारम्बार हातले हुत्याएर पानीमा पर्याँकपर्याँक गरे। शङ्खासुरले कामदेवलाई शिरमा थप्परले हिर्कायो। हे अगस्त्य मुनि ! कामदेव पानीमा पछारिए र फेरि उठे ॥३३–३५॥

यमराजको घरमा प्राणीलाई जस्तै गरी वीर कामदेवले त्यस शङ्खासुरलाई रीसले दुई हातले समातेर त्यस पर्वतको शिखरमा पछारे। प्रद्युम्नले पेटमा समाते र रीसले यमराजले पापीलाई जस्तै गरी शङ्खासुरका शिरमा मुठ्ठीले हिर्काए। हे अगस्त्य मुनि ! त्यसपछि शङ्खासुर प्रद्युम्नको मुड्की प्रहारले गर्दा शङ्खको जस्तो आवाज निकालेर खूबसित चिच्याउँदै मऱ्यो ॥३६–३८॥

---

१७. कन्दर्पो मुष्टिमुद्यम्य, इति न.सं.पु.पाठः।
१८. अपतत्स हली कूटे गदापातेन विह्वलः, इति न.सं.पु.पाठः।
१९. समुत्तीर्य, इति न.सं.पु.पाठः।
२०. चिक्षेप च, इति न.सं.पु.पाठः।
२१. यथासुभृद्यमक्षये, इति न.सं.पु.पाठः।

तस्मिन्देवा गगनगतयः पात्यमाने च शङ्खे
प्रद्युम्नाय प्रसभमसृजन् नन्दने सम्भवान् यान्।
पुष्पासारानतिसुललितान् साधुसाध्वित्यवोचन्
दुष्टोऽस्माकं प्रवर ! निहतो नु त्वयेत्यब्रुवन् वै ॥३९॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये प्रद्युम्नोत्तरे शङ्खासुरवधो नामो नाशीत्युत्तरशततमोऽध्यायः ॥१७९॥

---

शङ्खासुरलाई पछारेपछि आकाशमा रहेका देवताहरूले नन्दनवनमा फुलेका फूल ल्याएर प्रद्युम्नमाथि ठूलो वर्षा गरे। 'हाम्रो अत्यन्त बलियो दुष्ट शत्रुलाई मारेर हजुरले साह्रै असल काम गर्नुभयो' भनेर तिनीहरू रमाउन थाले ॥३९॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्ड नेपालमाहात्म्यको प्रद्युम्नोत्तरमा शङ्खासुरको वधनामक
एकसय उनान्असियौं अध्याय पूरा भयो।

# अशीत्यधिकशततमोऽध्यायः

## दानासुरवधः

### स्कन्द उवाच

शङ्खस्वनं समाकर्ण्य भीषणं विह्वलोदितम्। उन्ममज्ज जलाच्छीघ्रं विराधः किमिति ब्रुवन् ॥१॥
सम्प्रेक्ष्य पातितं शङ्खं प्रद्युम्नेनैव यादवैः। रोषात्प्रवर्द्धितः कूर्मः सोऽभूत् शैलोपमस्तदा[1] ॥२॥
सङ्क्षोभ्य वाग्वतीतोयं नादेनाह्वयदाशु च। दानासुरं कनिष्ठञ्च मायाविनं धरोपमम् ॥३॥
ददर्श दर्पको दैत्यं कूर्मरूपं महास्वनम्। तुङ्गशैलोपमं भीष्मं कालरुद्रमिव क्षये ॥४॥
रक्तास्यं रक्तमूर्द्धानञ्चक्रनेत्रं महाभुजम्। राजमानं ह्रदे श्यामं कौस्तुभेन विभूषितम् ॥५॥
रुषान्वितं स्मरः प्रेक्ष्य कौस्तुभं तद्गलावृतम्। शार्ङ्गञ्च[2] सशरं धृत्वा हन्तुं दैत्यान्तिकं ययौ ॥६॥
आकर्णं शरमुत्सार्य लक्ष्यीकृत्य हि दर्पकः। सन्दश्य स्वाधरं दन्तैः कूर्मं जघान सायकैः ॥७॥
विननाद भृशं कूर्मः शराघातेन पीडितः। समुद्धृत्य शरं गाढं निममज्ज जले पुनः ॥८॥
वाग्वत्याः कथनं स्मृत्वा जले स न मरिष्यति। कूर्मरूपः कदा चेति चिन्ताकुलोऽभवत्स्मरः ॥९॥
ततो दानासुरः शीघ्रं तत्रागमद्रुषान्वितः। भ्रातुर्निनादमाकर्ण्य खड्गपाणिर्महाबली ॥१०॥
आलोक्य यादवान् दानो व्यथाविह्वलमग्रजम्। खड्गमुद्यम्य दुद्राव हन्तुकामः स्मरं रुषा ॥११॥
ततः कामः शरेणैवं खड्गं तस्य करोद्यतम्। चिच्छेद च द्विधा शीघ्रं बाणवर्षं ववर्ष च ॥१२॥
यादवास्त्वरितं जघ्नुः शिलाधौतैः शरैर्भृशम्। अमर्षैः पूरितं दैत्यं समावृत्य समन्ततः ॥१३॥

---

## अध्याय – १८०

### दानासुरको वध

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि !आत्तिएर कराएको डरलाग्दो शङ्खध्वनि सुनेर विराध नाम गरेको दैत्य यो के हो ? भन्दै पानीबाट तुरुन्त निस्कियो यादवले सहित भएको प्रद्युम्नले शङ्खासुरलाई पछारेको देखेर कूर्म नाम गरेको दैत्य रीसले फुलेर शत्रुहरूका अगाडि पहाडजत्रै बन्यो। पहाडजत्रै शरीर भएको त्यस कूर्म दैत्यले वाग्वतीको पानीलाई हल्लाएर आवाज निकाल्दै कान्छो भाइ दानासुरलाई तुरुन्त बोलायो। कामदेवले प्रलयकालका कालरुद्रसमान अत्यन्त अग्लो पहाडजस्तो डरलाग्दो ठूलो आवाज गर्ने कछुवाको रूप लिने दैत्यलाई देख्नुभयो। त्यसको मुख रातो थियो, टाउको राता थियो, आँखा बाटुला थिए, ठूला-ठूला हात थिए, कौस्तुभमणिले गर्दा त्यसको वर्ण कालो थियो र त्यो तलाउमा सुशोभित देखिन्थ्यो ॥१-५॥

त्यसको गलामा रहेको कौस्तुभमणिलाई देखेर प्रद्युम्न रिसाए र धनुष बाण लिएर मार्नका लागि त्यस दैत्यको नजिकै गए। प्रद्युम्नले कानसम्म धनुष खिंचेर ताकी बाण छोडे। आफ्नो ओठ दाँतले टेकेर बाणले कूर्म राक्षसलाई हाने। बाणका चोटले पीडित भएको त्यो कूर्म राक्षस अत्यन्त करायो। गहिरोसित रोपिएको बाणलाई निकालेर फेरि त्यो पानीमा डुब्यो ॥६-८॥

कूर्मको रूप लिने त्यो दैत्य पानीमा मर्दैन भन्ने वाग्वतीको वचन सम्झिएर प्रद्युम्न चिन्ताले ग्रस्त भए। त्यसपछि भाइको शब्द सुनेर तरवार हातमा लिएर महाबली दानासुर रिसाउँदै त्यहाँ आयो। पीडित दाजु र यादवहरूलाई देखेर दानासुर प्रद्युम्नलाई मार्नका लागि रिसाएर तरवार उज्याउँदै दगुर्‍यो। त्यसपछि प्रद्युम्नले बाणले हातमा उठाएको तरवारलाई तुरुन्त दुई टुक्रा पारे र बाणको पनि वर्षा गरे। यादवहरूले पनि तुरुन्त ढुङ्गामा तिखारेका बाणहरूले रीसले परिपूर्ण भएर दैत्यहरूलाई चारैतिरबाट बेस्सरी हिर्काए ॥९-१३॥

---

१. स शैलोपमोऽरीन्प्रति, इति न.सं.पु.पाठः। २. शारङ्गम्, इति न.सं.पु.पाठः।

छिन्नखड्गं स सन्त्यज्य शालमुत्पाटयन् रुषा। यादवान् हन्तुकामोऽसौ चन्दनाचलसानुगान् ॥१४॥
समूलं शालमुद्यम्य दानासुरो रुषा द्रुतम्। वारं वारं परिभ्रम्य चाभिदुद्राव यादवान् ॥१५॥
तं प्रेक्ष्य यादवाः सद्यो दुद्रुवुर्नगगह्वरम्। सेतोश्च पश्चिमे भागे सन्त्यज्य हलिनं पुनः ॥१६॥
ततो जघान दानोऽसौ लाङ्गलिनं रुषा भृशम्। न चचार हली तत्र मत्तेभ इव दर्भकैः ॥१७॥
ततो रामो रुषा युक्तः समाकृष्य हलेन तम्। अताडयद् भृशं तस्य मूर्द्धनि मुसलेन च ॥१८॥
ततोऽपतत्किरीटञ्च भग्नं तस्यैव शीर्षतः[३]। तादृशं स्वं किरीटं स चुकोप प्रेक्ष्य तं प्रति ॥१९॥
गण्डशैलं समादाय चोत्पपाताम्बरेऽसुरः। यत्रैव यादवं गोष्ठं चिक्षेपाशु मुहुर्मुहुः ॥२०॥
ससृपुर्यादवाः शीघ्रञ्चन्दनाचलगह्वरम्। तादृशं प्रेक्ष्य शैलाग्रं ग्राववृष्टिं समन्ततः ॥२१॥
ववर्ष करकान् ग्रावान् पांसूनसपवनाँस्तथा। व्योमस्थः सजलान्दान उद्दिश्य यादवान् भृशम् ॥२२॥
ततश्चिक्षेप कामोऽसौ मोहनास्त्रञ्च जृम्भणम्। समुद्दिश्य रुषा व्योम्नि मायामयञ्च मायिनम् ॥२३॥
तेनास्त्रेण द्रुतं तत्र दानः सम्मोहितो भृशम्। जृम्भित उन्मनीभावो निष्प्रपञ्चोऽभवद्युधि ॥२४॥
ततो व्योम्नोऽपतत्सद्यो दानासुरो विजृम्भणः। सङ्क्षोभयन् ह्रदं तीव्रं कूर्मस्य चोत्तरान्तिके ॥२५॥
सीरपाणिस्ततः क्रोधात्तमुद्दिश्य द्रुतं पुनः। हलं चिक्षेप तत्रैव वधाय च महाबली ॥२६॥
हलञ्चापि[४] तमाकृष्य चानिनाय बलान्तिकम्। जलोपरि तलाच्छीघ्रं गण्डग्रावः समुद्धृतः ॥२७॥
आकृष्य सहसा रामो हलेन तं रुषान्वितः। ताडयामास मूर्द्धानं मुसलेनाशु तस्य च ॥२८॥
भग्नशीर्षो व्यसुस्तत्र सोऽपतद्धि जलान्तरे। विनदंश्च महानादं दैत्यलोकभयावहम् ॥२९॥

---

काटिएको तरवारलाई छोडेर त्यस दैत्यले चन्दनाचलको फेदीमा रहेका यादवहरूलाई मार्नका लागि रीसले सालको रुख उखेल्यो। जरैसमेत सालको रुख उखेलेर दानासुर रीसले खूबसित घुम्यो र यादवहरू भएतिर दगुर्‍यो। त्यसलाई देखेर यादवहरू बाँधको पश्चिम भागमा बलरामलाई छाडेर पहाडका गुफा भएतिर भागे। त्यसपछि दानासुरले रीसले बलरामलाई खूबसित पिट्यो। तर बलराम कुशले हिर्काएको मत्त हात्तीजस्तै बनेर बस्नुभयो, कत्ति पनि चल्नुभएन। त्यसपछि बलरामले रीसले त्यसलाई हलाले हान्नुभयो। त्यसको शिरमा मुसलले बेस्सरी पिट्नुभयो ॥१४-१८॥

अनि त्यसका शिरबाट भाँचिएको मुकुट खस्यो। त्यो आफ्नो मुकुट खसेको देखेर बलराममाथि झन् क्रुद्ध भयो। दैत्य ठूलो पत्थर लिएर आकाशमा उड्यो र जहाँ यादवहरू बसेका थिए त्यसै ठाउँमा बारम्बर प्रहार गर्न थाल्यो। चारैतिरबाट भएको ढुङ्गा र पर्वतको वृष्टि देखेर यादवहरू पनि चन्दनाचलको गुफामा तुरुन्त प्रवेश गरे। आकाशमा बसेको त्यस दानासुर दैत्यले यादवहरूलाई ताकेर असिना, पत्थर, धूलो र हावा खूबसित वर्सायो ॥१९-२२॥

त्यसपछि रिसाएर मायावी प्रद्युम्नले आकाशमा रहेको त्यस दैत्यलाई लक्ष्य गरेर मोहनास्त्र र जृम्भणास्त्र प्रहार गरे। त्यस अस्त्रले गर्दा दानासुर तुरुन्त मोहित भयो। हाई गर्दै बेहोस् भएर युद्ध गर्न असमर्थ भयो। त्यसपछि बेहोस भएको त्यो दानासुर दैत्य कूर्मासुर बसेको दहको उत्तरतर्फको भागलाई खूबसित हल्लाउँदै त्यस दहमा पछारियो ॥२३-२५॥

महाबली बलरामले मार्नका लागि रीसले त्यसलाई ताकेर तुरुन्त हलो हिर्काउनुभयो। हलाले त्यसलाई तानेर बलरामको नजिकै ल्यायो। पानीबाट भूमिमा ठूलो पत्थरजस्तै बनाएर हलाले त्यसलाई निकाल्यो। झट्पट बलरामले रीसले त्यसलाई हलाले तानेर त्यसको शिरमा मुसलले प्रहार गर्नुभयो। त्यसको शिर फुट्यो, प्राण गयो, दैत्यसमाजलाई भयभीत बनाएर ठूलो शब्द गर्दै त्यो दैत्य पानीमा पछारियो ॥२६-२९॥

---

३. मूर्द्धनः, इति न.सं.पु.पाठः।

४. हलोऽपि च, इति न.सं.पु.पाठः।

देवाः सिद्धा गगनगतयश्चान्तरिक्षाद्धि शश्वत्
पुष्पासारांस्तमभिववृषुर्हन्यमाने च दाने।
आलोक्यार्यं खलु मुसलिनं साधु साध्वित्यवोचन्
दुष्टोऽसौ नः प्रवर ! भवता पातितः पापनिष्ठः ॥३०॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे प्रद्युम्नोत्तरेदानासरवधो नामाशीत्यधिकशततमोऽध्यायः ॥१८०॥

---

दानासुर मरेपछि आकाश तथा अन्तरिक्षमा रहेका देवता र सिद्धहरूले बलराममाथि पुष्पवृष्टि गरे। मुसल लिएका बलरामलाई हेरेर हामी देवताको शत्रु पापी दुष्टलाई मार्नुभयो र हाम्रो ठूलो कल्याण गर्नुभयो भनेर उनीहरूले उहाँको प्रशंसा गरे ॥३०॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्ड नेपालमाहात्म्यको प्रद्युम्नोत्तरमा दानासुरवधनामक
एकसय असियौं अध्याय पूरा भयो।

# एकाशीत्यधिकशततमोऽध्यायः

## महेन्द्रदमनसैन्यवधप्रसङ्गः

### स्कन्द उवाच

ततः प्रतिस्वनं तीव्रं तद्बिलेऽभूत्तदा मुने। दानभीष्मस्वनोद्भूतैर्ह्रदस्थाम्भोभवैस्तथा ॥१॥
वज्रनाभस्तदा प्रेक्ष्य तत्स्वनेन प्रकम्पितः। गृहान्तरे स्थितो दैत्यः किमिति कृतसम्भ्रमः ॥२॥
परिशङ्क्य भयं किञ्चिद्रिपोर्वज्रो महाबलः। कवची निर्ययौ गेहात् खड्गपाणिर्धनुर्द्धरः ॥३॥
तस्य चानुययुर्दैत्याः कवचिनो धनुर्धराः। शस्त्रास्त्रप्रोद्यता योद्धुं रथैश्च युद्धलालसाः ॥४॥
ददर्श यादवान् वज्रः कूर्मान्तिके च यानगान्। दानासुरं शरैर्घ्नन्तं रामं[1] जलान्तरे मुहुः ॥५॥
तादृशान् यादवान् प्रेक्ष्य चुकोपासुरनायकः। शैलशृङ्गप्रतीकाशो भिन्नाञ्जनचयोपमः ॥६॥
प्रद्युम्नं स तदालोक्य व्याचष्ट वचनं रुषा। गम्भीरघोषनादश्च गर्जत्कालघनोपमः ॥७॥

### शक्रताप उवाच

रे क्षुद्राः प्राकृता मूर्खाः कुतश्चात्र समागताः। बद्धाः पाशैश्च दैवेन प्रापिता[2] निधनाय च ॥८॥
के यूयं कस्य पुत्राश्च निधनं गन्तुमुद्यताः। तथ्यं वदत नोचेद्धि यं वा तं वा प्रहन्म्यहम् ॥९॥

### प्रद्युम्न उवाच

रे रे पापिष्ठ मूढात्मन् नास्मान् जानासि त्वं कथम्[3]। विदितुमुद्यतोऽसि त्वं यद्यपि शृणु नः कुलम् ॥१०॥
येन हतः पुरा मूलं वः कुलप्रपितामहः। शत्रुगणास्तथा दैत्या हता[4] जन्मनि जन्मनि ॥११॥
तस्य भगवतो विष्णोरात्मजं विद्धि दानव। प्रद्युम्न इति विख्यातं प्राप्तमत्र तवान्तकम्[5] ॥१२॥

---

## अध्याय – १८१

### महेन्द्रदमनको सेनाको वध

कार्तिक स्वामीले भन्नुभयो – तलाउभित्रबाट आएको दानासुरको डरलाग्दो ध्वनिबाट पैदा भएको प्रतिध्वनिले गर्दा त्यस छिद्रमा ठूलो आवाज आयो। त्यसपछि घरभित्र बसेको भए पनि त्यो शब्द सुन्नासाथ वज्रनाभ नाम गरेको दैत्य यो के हो भनेर निकै हडबडायो। महाबली वज्रनाभ केही डराउँदै शत्रुको कार्य हो भन्ने ठानेर हातमा तरवार लिई धनुष भिरेर घरबाट बाहिर निस्क्यो। कवच लगाएका, धनुष भिरेका, अस्त्र र शस्त्र बोकेका दैत्यहरू युद्ध गर्ने लालसा लिएर रथमा चढी त्यसका पछिपछि लागे ॥१–४॥

वज्रनाभले कूर्म नाम गरेको दैत्यको नजिकै विमानमा बसेका यादवहरू र पानीभित्र बाण प्रहार गरी दानासुरलाई मार्न लागेका बलरामलाई देख्यो। पहाडको टाकुराजत्रो, गाजलको पहाडजस्तो त्यो दैत्य त्यस्ता यादवहरूलाई देखेर क्रुद्ध भयो। गम्भीर शब्द गरेर गर्जने कालो मेघजस्तो त्यस दैत्यले प्रद्युम्नलाई देखेर रिसाउँदै भन्न लाग्यो ॥५–७॥

इन्द्रदमनले भन्यो – रे क्षुद्र प्राकृत मूर्ख हो ! कहाँबाट यहाँ आयौ ? दैवले पासोले बाँधेर मार्नका लागि तिमीहरूलाई यहाँ ल्यायो। तिमीहरू को हौ ? कसका छोरा हौ ? मर्न तयार भएका छौ कि कसो ? साँचो भन, नत्र जोसुकै भए पनि म मार्छु ॥८–९॥

प्रद्युम्नले भने – हे पापिष्ठ मूर्ख ! किन तैँले हामीलाई चिनिनस् ? तैँलाई जान्ने इच्छा छ भने हाम्रो कुलका बारेमा सुन। जसले तेरा कुलको मूलपुरुष तेरो बूढो बाजेलाई माऱ्यो, प्रत्येक जन्ममा शत्रु दैत्यहरूलाई जसले बारम्बार मारिरहेको छ, उनै भगवान् विष्णुको प्रद्युम्न नामले प्रसिद्ध छोरो भनेर मलाई बुझ, म तैँलाई मार्न आएको छु ॥१०–१२॥

---

१. रामं प्रहारयन्तञ्च दानम्, इति न.सं.पु.पाठः।
२. आनीता, इति न.सं.पु.पाठः।
३. युस्मान्न ज्ञायसे कथम्, इति न.सं.पु.पाठः।
४. शश्वत्, इति न.सं.पु.पाठः।
५. विख्यातः प्राप्त इव तवान्तकः, इति न.सं.पु.पाठः।

अयन्तु बलिनां श्रेष्ठो बलभद्र इति श्रुतः। जवीयान्नःपितुर्मान्यो दैत्यशत्रुनिकृन्तकः ॥१३॥
अनेन निहतो दानस्ते भ्राताऽसौ ह्रदेऽधुना। मुसलेनैव मायावी पश्य पश्य जलान्तरे ॥१४॥
निपातितो मया शङ्खो दुष्टः सेतुप्ररक्षकः। हत्वा त्वां सान्वयं पाप ! हनिष्यामि च कच्छपम् ॥१५॥
शम्बरो निहतो पूर्वं देवानाञ्च सुकण्टकः[६]। मान्येन च बलेनासौ दानवेभ्यो गरिष्ठकः ॥१६॥
लाञ्छनं त्वत्कृतं पूर्वं यद्यस्ति च दिवस्पतेः। तत्सर्वं नाशयिष्यामि हत्वा त्वां सान्वयं खलु ॥१७॥

शक्रताप उवाच

यद्यपि यादवा यूयं प्रद्युम्नस्त्वं विशेषतः। नोऽद्य चोपस्थितं भाग्यं चिरकालमुपेक्षितम् ॥१८॥
शम्बरो निहतो येन स ममाग्रमुपस्थितः। एतद्भाग्यात्परं भाग्यं किं विधेयमतः परम् ॥१९॥
अद्य त्वां सान्वयं हत्वा हलिनं केशवं पुनः। राज्यं भुनज्मि त्रैलोक्यं निष्कण्टकं महत्सुखम् ॥२०॥
वैरान्तरञ्च मत्पारं गच्छामि सहसाप्यलम्। मत्पितॄणां हतानाञ्च कृतान्तं मूढ मां विदुः[७] ॥२१॥

स्कन्द उवाच

इत्याक्षिप्याशु कामाय शक्रतापो रुषा शरम्। उत्ससार स तूणीराद् गाढं चक्रीकृतात् तदा[८] ॥२२॥
मुमोच सहसा बाणं स्वर्णपुङ्खं मुहुर्मुहुः। तीक्ष्णमुखं शिलाधौतं काममुद्दिश्य यादवान् ॥२३॥
ववर्ष शरवर्षाणि यादवेषु च दानवः। सम्भूय सहसा शश्वद् भृशं तेषां समन्ततः ॥२४॥
ततश्च रुक्मिणीसूनुर्गाण्डीवं हि समादधे। समुत्सार्याश्रवं बाणं मुमोच दानवोपरि ॥२५॥
सम्भूय यादवाः सद्यः शरासारानवर्षयन्। स्वर्णपुङ्खाञ्छिलाधौताँल्लघुहस्तैः समीरितान् ॥२६॥

---

दैत्यहरूलाई नाश गर्ने उहाँ मेरा बुबाका दाजु, आदरणीय ठूलोबुबा बलवान् बलराम हुनुहुन्छ। उहाँले नै तेरो भाइ मायावी दानासुरलाई भर्खरै मुसलले हिर्काएर तलाउभित्र मार्नुभएको छ। पानीभित्र हेर। बाँधको रक्षा गर्ने दुष्ट शङ्खासुरलाई मैले नै मारेँ। हे पापी ! वंशसहितै कच्छप दैत्यलाई पनि म मार्नेछु। देवताको काँढो भएको शम्बरासुरलाई मैले पहिले नै मारेँ। पूजनीय बलरामले यस दानवमा गरिष्ठ बनको यस दानासुरलाई मार्नुभयो। पहिले तैँले गरेको इन्द्रमाथिको जति अपराध छ तेरो वंशैसहित तँलाई मारेर नै म सबैको बदला लिनेछु ॥१३-१७॥

इन्द्रदमनले भन्यो - यद्यपि तिमीहरू यादव हौ। ती मध्ये पनि विशेष मानिएको तँ प्रद्युम्न होस् भने धेरै कालदेखि तँलाई मार्ने अपेक्षा राख्ने मेरो भाग्य सफल हुने दिन आज अगाडि आइपुगेछ। जसले शम्बरासुर दैत्यलाई मार्‍यो त्यही शत्रु मेरो अगाडि उपस्थित भएको छ, यसभन्दा अरू बढी सौभाग्य के हुन सक्छ ? आज म वंशसहित बलराम र कृष्णलाई मारेर तीनै लोकको राज्य निष्कण्टक बनाई अत्यन्त सुखका साथ भोग गर्छु। हे मूर्ख हो ! तुरुन्त वैरभावको बदला लिएर मरेका मेरा पितृहरूको ऋणबाट म मुक्त हुन्छु भन्ने कुरा तिमीहरू बुझिराख ॥२१॥

कार्तिक स्वामीले भन्नुभयो - यति भनेर रिसाउँदै इन्द्रदमनले तुरुन्त प्रद्युम्नलाई चक्रको आकार भएको तीखो बाण प्रहार गर्‍यो। प्रद्युम्न र यादवहरूलाई ताकेर दानवले तीखो मुख भएका, ढुङ्गामा उधइएका र सुनको बीँड भएका बाणहरू अचानक छोड्यो। दानवहरू मिलेर अचानक यादवहरूमाथि बारम्बार चारैतिरबाट खूबसित बाणहरूको वर्षा गरे। त्यसपछि प्रद्युम्नले गाण्डीव धनु समाते। सबै बाणहरूलाई हटाई कानसम्म पुग्ने गरी खैँचिएर दानवहरूमाथि त्यो धनुष प्रहार गरे। यादवहरूले पनि मिलेर सुनको बीँड भएका, पत्थरमा उध्याइएका बाणहरूलाई हातले छिट्ये-छिट्ये फ्याँकेर वर्षा गरे ॥२२-२६॥

---

६. शंवरं निहतं पूर्वं देवानाञ्च सुकण्डकम्, इति न.सं.पु.पाठः।
७. कृतान्तो मूढ वो विदुः, इति न.सं.पु.पाठः।
८. उत्ससार शरं गाढञ्चक्रीकृतो भृशं तदा, इति न.सं.पु.पाठः।

सीरपाणी रुषाविष्टो दन्तैः निपीड्य स्वाधरम्[९] । हलं चिक्षेप सद्योऽसौ चोद्दिश्य दैन्यसैन्यकम् ॥२७॥
समाकृष्य हलेनाशु चानीय दैत्यसैन्यकम् । शक्रमार्गाद्रिसानौ च मुसलेन जघान सः ॥२८॥
एवमाकृष्य तान् दैत्यानहनद्[१०] बहुशो मुहुः । शतं शतसहस्राणि कतिचिच्च जले तथा ॥२९॥
जघ्नुश्च यादवा दैत्यान् शस्त्रास्त्रैर्बहुशो बहून् । सम्भूय सहसा तत्र जले च शैलगह्वरे ॥३०॥
गदोऽपि गदया मूर्ध्नि कुम्भोदरं जघान हि । विष्णुपद्युद्भवे शैले बहुबारं प्रयुध्य च ॥३१॥
पपात शैलसानौ स गदाप्रहारतो भृशम् । वमन्नसृङ्मुखाच्छश्वद्दैत्यः कोलाहले व्यसुः ॥३२॥
आलोक्य भ्रातरं शैले पतन्तं तं महोदरः । गदामुद्यम्य दुद्राव गदमताडयत्तया ॥३३॥
गदे गदाप्रहारच्च व्यथिते तनुविह्वले । गदयाऽताडयत् साम्बो महोदरस्य मस्तके ॥३४॥
वमन्नसृक् क्षणात्तत्र महोदरो व्यसुस्तदा । निर्घातसदृशाद् घातात् साम्बगदाप्रहारतः ॥३५॥
आलोक्य तादृशं दैत्यो निकुम्भो हि रुषा गदी । यादवानभिदुद्राव मृगयूथान् यथा हरिः ॥३६॥
यादवास्त्वरितं भीष्मान् तानभिप्रेक्ष्य दुद्रुवुः । आयोधनं परित्यज्य मृगेन्द्राचलकन्दरम् ॥३७॥
युयुधुर्यादवास्तत्र निकुम्भेन समं पुनः । गदाभिश्छद्मगं युद्धं सर्वलोकभयङ्करम् ॥३८॥
निकुम्भो निर्जनः क्रोधाद् गदयाऽताडयद्धि तान् । शश्वत्पृथक् पृथग् भूयश्चाभिद्रुत्याशु गह्वरे ॥३९॥
यादवाश्चापि सम्भूय चोत्तीर्य तद्व्यथां रुषा । निकुम्भञ्च गदाभिस्ते प्रजघ्नुस्तं समन्ततः ॥४०॥
हलायुधो रुषाविष्टो हलेनाकृष्य दानवम् । निकुम्भं मुसलेनाशु जघान तस्य मस्तके ॥४१॥

---

बलरामले पनि रिसाउँदै दाँतले ओठ टेक्नुभयो र दैत्यका सेनाहरूलाई ताकेर हलो प्रहार गर्नुभयो । हलाले तानेर दैत्यका सेनाहरूलाई अगाडि ल्याउनुभयो र शक्रमार्ग नाम गरेको पहाडको टुकुरामा लगेर मुसलले हिर्काउनुभयो । यसरी तानेर उहाँले धेरैभन्दा धेरै सयौं र हजारौं दैत्यलाई मार्नुभयो । त्यसैगरी केही दैत्यलाई जलमा मार्नुभयो । यादवहरूले जम्मा भएर शस्त्रअस्त्रहरूले अचानक पहाडका गुफा र पानीका तलाउमा धेरैभन्दा धेरै दैत्यहरूलाई मारे ॥२७-३०॥

विष्णुमती नदी पैदा भएको पर्वतमा धेरै समयसम्म युद्ध गरिसकेपछि गदले पनि कुम्भोदरलाई गदाले शिरमा हिर्काए । गदाका चोटले पहाडको फेदीमा मुखबाट रगत वमन गर्दै चारैतिर अत्यन्त कोलाहल भइरहेको समयमा त्यो दैत्य मर्‍यो । पर्वतमा भाइ कुम्भोदर मरेको देखेर महोदर नाम गरेको दैत्य गदा उज्याएर दौड्यो र गदाले गदलाई हिर्कायो । गदाका चोटले गद पीडित भएको देखेर साम्बले महोदरको शिरमा गदाले हिर्काए ॥३१-३४॥

वज्रको चोटजस्तो असह्य गदाको चोटले गर्दा महोदर नाम गरेको दैत्य रगत वमन गर्दै त्यसै ठाउँमा एकछिनपछि मर्‍यो । जसरी मृगको बथानलाई देखेर सिंह दौडन्छ त्यसरी नै त्यस्तो स्थितिलाई देखेर निकुम्भ र अन्य दैत्यहरू रिसाउँदै गदा लिएर यादवहरू भएतिर दौडिए । यादवहरू पनि डरलाग्दा त्यस्ता दैत्यहरूलाई देखेर युद्ध छोडी मृगेन्द्र पर्वतको गुफातिर कुलेलम ठोके ॥३५-३८॥

यादवहरूले गुफामा लुकेर निकुम्भसित सम्पूर्ण प्राणीहरूलाई त्रास पैदा गर्ने खालको गदायुद्ध गर्न थाले । तुरुन्त गुफामा पसेर एक्लै निकुम्भले बारम्बार अलग-अलग गरी गदाले यादवहरूलाई प्रहार गर्‍यो । रिसाएका यादवहरूले पनि एकै ठाउँमा जम्मा भएर निकुम्भको प्रहारले उत्पन्न चोटको पीडालाई सहँदै चारैतिरबाट गदाले निकुम्भलाई हिर्काए । बलरामले क्रुद्ध भएर हलाले निकुम्भ नाम गरेको दानवलाई तानी शिरमा मुसलले हिर्काउनुभयो ॥३९-४१॥

---

९. पीड्याधरं स्वकम्, इति न.सं.पु.पाठः ।
१०. तानार्यानहनद्, इति न.सं.पु.पाठः ।

ततो निकुम्भे पतिते यदा मुदा सुवाद्यमाने गगनात् प्रहर्षणात् ।
सुरेरिता सा खलु पुष्पसन्ततिः पपात तेषामुपरि ध्रुवं मुहुः ॥४२॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये प्रद्युम्नोत्तरे शक्रतापसैन्यवधो नाम एकाशीत्यधिकशततमोऽध्यायः ॥१८१॥

---

निकुम्भ मरेपछि हर्षले आकाशमा बाजा बज्न थाले । देवताहरूले गरेको पुष्पवर्षा तिनीहरूमाथि बारम्बार झर्न थाल्यो ॥४२॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्ड नेपालमाहात्म्यको प्रद्युम्नोत्तरमा इन्द्रलाई सन्ताप दिने दैत्यसेनाको वधनामक एकसय एकासियौं अध्याय पूरा भयो ।

# द्व्यशीत्यधिकशततमोऽध्यायः

इन्द्रदमनवधः

स्कन्द उवाच

एवं निपातितेष्वार्य सैन्येषु भ्रातृषु ध्रुवम्। मायाविनो महा[1]क्रोधाच्छक्रारेर्ववृधे वपुः ॥१॥
उत्पपाताम्बरं सद्यश्चालक्ष्योऽसुभृतां तदा। पांसुवर्षां चकारादौ[2] तेषामुपरि सोऽनिशम् ॥२॥
सानिलाँश्च जलासारान् करकान् सानलांस्तथा। चच्छादाशु दिशः सर्वाः अन्धा जाता निशा यथा[3] ॥३॥
ववर्ष प्रस्तरासारान् स तेषामुपरि ध्रुवम्। नानास्यान् हि शरासारान् स तेषामुपरि ध्रुवम् ॥४॥
जलानिलानलग्राववृष्टिभिश्च समन्ततः। पीड्यमाना ह्यभूवँस्ते निर्यत्ना यादवा मुने ॥५॥
ददंशुर्यादवानस्त्रैस्तत्प्रेरितैर्भृशं मुहुः। गृध्रोलूकविडालास्यैः सिंहव्याघ्राननैस्तथा ॥६॥
सन्दंश्य यादवान्सर्पा बबन्धुः सुदृढं पृथक्। आनिनाय बिले वज्रो हन्तुं तानचलात्स्वके ॥७॥
ददर्श तादृशं वज्रं नीयमानाञ्च यादवान्। चुकोपातिशयं कृष्णश्चावोचद् गरुडं प्रति ॥८॥

कृष्ण उवाच

पश्य पश्याशिवमां चेष्टां दुष्टस्य दानवस्य च। नारदेन्द्रामरान् तार्क्ष्य ! तादृशान् यादवान् पुनः ॥९॥
निष्प्रयत्नान् यादवांस्तान्[4] नीयमानान् बिलं प्रति। दुष्टदैत्येन चाबध्य रक्षणीयान् स्वकान् बुधैः ॥१०॥
तारयेत्सङ्कटाद्धीरः स्वाप्तं वा शरणागतम्। बुद्धिभिः पौरुषैर्नोचेन्किल्विषमश्नुते हि सः ॥११॥
तार्क्ष्य ! भुङ्क्ष्व ध्रुवं सर्पान् यादवानां हि बन्धकान्। शक्र ! जयन्त ! दिक्पाला युध्यन्तु तेन वै समम् ॥१२॥

---

## अध्याय - १८२

इन्द्रदमनको वध

कार्तिक स्वामीले भन्नुभयो – यसरी भाइ र सेना मारिएपछि मायावी इन्द्रदमनको शरीर रीसले बढेर आयो। फट्ट नदेखिने भएर ऊ आकाशमा उफ्रियो र तिनीहरूमाथि पहिले उसले बारम्बार धूलो वर्सायो। हावा, पानी, आगो र असिनाको समेत उसले वर्षा गऱ्यो। सबै दिशा ढाकिए, रात परेजस्तै भएर अँध्यारो भयो। त्यसले तिनीहरूमाथि ढुङ्गा वर्षा गऱ्यो, अनेक किसिमका बाणहरू वर्सायो, सर्पहरूको वर्षा गऱ्यो ॥१-४॥

हे अगस्त्य मुनि ! पानी, हावा, आगो र ढुङ्गाको वर्षाले गर्दा यादवहरू अत्यन्त पीडित भए र केही गर्न नसक्ने स्थितिमा पुगे। त्यसले छोडेका गिद्ध, लोटेकोसेरो, बिरालो, सिंह र बाघको जस्तो मुख भएका अस्त्रहरूले यादवहरूलाई निरन्तर डस्न थाले। सर्पहरूले यादवहरूलाई डसेर बलियोसँग बाँधे। वज्रनाभले तिनीहरूलाई मार्न पर्वतबाट आफ्नो ओडारमा ल्यायो। पर्वतको गुफामा यादवहरूलाई लान लागेको वज्रलाई देखेर भगवान् कृष्ण अत्यन्त रिसाउनुभयो र उहाँले गरुडलाई भन्न लाग्नुभयो ॥५-८॥

कृष्णले भन्नुभयो – दुष्ट दानवको यो चाला हेर। हे गरुड ! यसले देवता र यादवलाई निष्प्रयत्न तुल्याइदियो। प्रयास गर्न नसक्ने यादवहरूलाई आफ्नो गुफा नजिकै लगेर त्यस दुष्ट दैत्यले मार्न आँटेको छ। बुद्धि भएकाले आत्मीय व्यक्तिहरूको रक्षा गर्नुपर्छ। बुद्धिमान्ले आफन्त वा शरणमा आएको व्यक्तिलाई सङ्कटबाट बुद्धि र बलले भ्याएसम्म रक्षा गर्नुपर्छ। होइन भने त्यसले पाप भोग्नुपर्छ। हे तार्क्ष्य ! यादवहरूलाई बाँध्ने यी सबै सर्पलाई खाइदेऊ। हे इन्द्र ! हे जयन्त ! हे दिक्पाल हो ! तिनीहरूसँग तिमीहरू लड ॥९-१२॥

---

१. मायावी वीक्ष्य तान्, इति न.सं.पु.पाठः। २. पांशुवर्षं ववर्षादौ, इति न.सं.पु.पाठः।
३. आच्छाद्याशु दिशः सर्वाश्चान्धीकृतेव शर्वरी, इति न.सं.पु.पाठः। ४. यादवान्निःप्रयत्नान्, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

एवं प्रोक्तं समाकर्ण्य विभुना गरुडो द्रुतम्। परिक्रम्य नमत्स्कन्धो ययौ कृष्णान्तिकं द्रुतम्[५] ॥१३॥
तार्क्ष्यमालोक्य सन्त्रस्ताः परित्यज्याशु यादवान्। पक्षानिलैश्च द्वेष्टारः फणिनो दुद्रुवुर्जलम् ॥१४॥
जग्राह गरुडो दोष्णा शक्रारेर्मुकुटं द्रुतम्। निहत्य पक्षवातेन नयतो तस्य[६] यादवान् ॥१५॥
शक्रतापो रुषाविष्टो मुक्तकेशो महाबली। तार्क्ष्योपरि ववर्षाशु वह्निवृष्टिञ्च मायया ॥१६॥
ततोऽपतज्जले तार्क्ष्यो दग्धपक्षो हि निर्बलः। गदया प्रेक्ष्य तार्क्ष्यं स शक्रतापो जघान च ॥१७॥
हाहाकारोऽभवद्रावो व्योमव्यापी[७] भयोद्भवः। भीषया त्रिदशैः सिद्धैः मुनिभिश्च दुःखेरितः[८] ॥१८॥
कृष्णपुरःसरा देवा यादवानभिदुद्रुवुः। रक्षितुं त्वरितं यानैः शस्त्रास्त्रैश्च समुद्यतैः[९] ॥१९॥
तावच्चन्द्रो ववर्षाजौ पीयूषं गरुडोपरि। यावन्न त्रिदशाः प्राप्तास्तेषाञ्चैवान्तिकं मुने ॥२०॥
ततोऽभ्रमत्पुनस्तार्क्ष्यो जलाद् व्योम्नि च पूर्ववत्। ययौ चन्दनशैलं स सुधाप्ररोहितच्छदः ॥२१॥
देवदानवयोर्युद्धे दैत्यशस्त्रैः निपीडितः[१०]। दोष्णादायाद्रिसानुं स वज्रोपर्यक्षिपद्रुषा ॥२२॥
दैत्योऽपि गदया व्योम्नो निहत्य त्वरितं रुषा। शकलीकृतवान्सानुं यावन्न प्राप्तमन्तिकम् ॥२३॥
तार्क्ष्यारूढस्ततः कृष्णः शक्रतापोपरि ध्रुवम्। ववर्ष शरवर्षाणि शार्ङ्गच्युतानि सन्ततम् ॥२४॥
शक्रो ववर्ष भूयोऽसौ शरासारांस्तथैव तम्। अशनिना जघानाशु पूर्ववैरमनुस्मरन् ॥२५॥
सम्भूय यादवा भूयो जघ्नुर्वज्रं शरैर्भृशम्। देवा दिग्पतयश्चैव तथापरे समन्ततः ॥२६॥
ऐरावतो रुषा युक्तः पूर्ववैरं स्मरन्मुहुः। दन्ताभ्यां त्वरितं वज्रं शक्रतापं जघान वै ॥२७॥

---

कार्तिक स्वामीले भन्नुभयो – भगवान् कृष्णले भनेको सुनेर काँध झुकाएर गरुड कृष्णलाई परिक्रमा गरी यादवहरूको नजिकै गए। गरुडलाई देख्नासाथ डराएका र गरुडको पखेटाको हावाले गर्दा पीडित शरीर भएका सर्पहरू यादवहरूलाई छाडेर तुरुन्त पानीभित्र हाम्फाले। यादवहरूलाई लैजान लागेको वज्रनाभलाई पखेटाले हिर्काएर गरुडले इन्द्रदमनको मुकुट हातले तुरुन्त निकाले। कपाल फुकेको महाबली अत्यन्त क्रुद्ध इन्द्रदमनले मायाजाल रचेर गरुडमाथि आगो बर्सायो। त्यसपछि पखेटा डढेर निर्बल भएका गरुड पानीमा झरे। इन्द्रदमनले गरुडलाई देखेर गदाले हिर्कायो ॥१३–१७॥

हे अगस्त्य मुनि ! देवता, मुनि र सिद्धले गरेको आकाशव्यापी डरलाग्दो हाहाकार मच्चिएको आवाज आयो। कृष्णलाई अगाडि लगाएर देवताहरू यादवहरूको रक्षाका लागि शस्त्रअस्त्र लिएर विमान चढी तुरुन्त शत्रु भएतर्फ दौडिए। युद्धमा चन्द्रमाले गरुडमाथि अमृतको वर्षा गरे। देवताहरू नजिकमा आइपुग्नुभन्दा पहिले नै गरुड जलबाट अघिजस्तै गरी आकाशमा आए। अमृतले गर्दा पखेटा उम्रिएका गरुड चन्दनपर्वतमा गए। देवता र दानवको युद्धमा दैत्यका शस्त्रले व्याकुल भएका गरुड रिसाएर आफ्ना हातले पर्वतको टाकुरा उखेलेर इन्द्रदमनमाथि प्रहार गर्दै जाइलागे ॥१८–२२॥

दैत्यले पनि रीसले आकाशबाट आफ्नो नजिक आउनुभन्दा पहिले नै गदा प्रहार गरी त्यस टाकुरालाई टुक्रा–टुक्रा पारिदियो। गरुडमाथि चढेर भगवान् कृष्णले इन्द्रदमनमाथि शार्ङ्गधनुबाट छुटेका बाणहरूको बारम्बार वर्षा गर्नुभयो। फेरि पुरानो वैरभावलाई सम्झँदै इन्द्रले बाणहरूको वर्षा गरे र वज्र प्रहार गरे । यादव, देवता, दिक्पाल र त्यस्तै अरूहरू पनि जम्मा भएर वज्रनाभलाई चारैतिरबाट खूबसित बाणले हिर्काए। ऐरावतले पनि अघिको वैरभावलाई सम्झेर क्रुद्ध हुँदै दाँतले इन्द्रदमनलाई तुरुन्त हिर्कायो ॥२३–२७॥

---

५. कृष्णं ययौ तदन्तिकम्, इति न.सं.पु.पाठः।
६. पक्षपातेन नयन्तन्तञ्च, इति न.सं.पु.पाठः।
७. व्योमस्पृशः, इति न.सं.पु.पाठः।
८. त्रिदशं मुनिसिद्धानां दुःखेरितस्तदा मुने, इति न.सं.पु.पाठः।
९. शस्त्रास्त्राणि समुद्यताः, इति न.सं.पु.पाठः।
१०. युध्यमानेऽमरैः सार्द्धं दैत्यशास्त्रैः प्रहारिते, इति न.सं.पु.पाठः।

अमर्षैः पूरितो वज्रो गदामुद्यम्य सत्वरम्। त्रिदशानभिदुद्राव चैरावतमपातयत् ॥२८॥
त्रिदशा यादवा जग्मुः केशवं शरणं भयात्। भीष्मास्यं वज्रमालोक्य सुरक्षार्थं यथा क्षये ॥२९॥
शक्रैरावतयोः प्रेक्ष्य पतनं तत्र केशवः[११]। प्रज्वलत् सूर्यसङ्काशञ्चक्रं[१२] कामाय वै ददौ ॥३०॥
प्रणम्य शिरसा तातं भक्त्या परिक्रमन् स्मरः। सुदर्शनञ्च जग्राह हर्षप्रोत्फुल्लमानसः ॥३१॥
व्याजहार वचोऽग्राह्यं शक्रतापो रुषा तदा। अधिक्षिप्य च देवाँस्तान् श्रावयन्सर्वदेवताः ॥३२॥

शक्रताप उवाच

केशव ! मित्रध्रुक् काम ! शक्र बलाधुना ह्यलम्। हत्वा पापानरातिंश्च व्रजामि तत्पदं मुदा ॥३३॥
मम गदाप्रहारञ्च सोढव्यं ज्ञायतां[१३] ध्रुवम्। सहनाद् यस्य लोकेऽस्मिन् भविष्यथ सुपूजिताः[१४] ॥३४॥
शक्र ! स्मरसि किं येन प्रहृता सा गदा मयि[१५]। स कथं नागतो वीरः कस्त्वं भ्रातर्वदाऽधुना[१६] ॥३५॥
मित्रद्रुहं महापापं हत्वा दर्पक ! सत्वरम्। धर्मेश्वरसहायाद्वै व्रजाम्यहं परं पुरम् ॥३६॥

प्रद्युम्न उवाच

किमर्थं वल्गसे मूढ ! कुरु युद्धं मया समम्[१७]। दैत्यधर्मं पुरस्कृत्य दर्शयन् मां स्वपौरुषम् ॥३७॥
न वल्गन्ति च ये शूरा युधि शश्वत्परैः सह। प्रयुध्यन्ति परां शक्तिं दर्शयन्तो महारणे[१८] ॥३८॥
वृथा वल्गन्ति ये युद्धं सन्त्यज्य व्यर्थपौरुषाः[१९]। ये पौरुषेण युध्यन्ति[२०] शूरास्त एव विश्रुताः ॥३९॥

---

रिसाएको वज्रनाभ गदा लिएर तुरुन्त देवतातिर दौडियो र ऐरावतलाई पछार्‍यो। जसरी प्रलयकालमा मानिसहरू भगवान्को शरणमा जान्छन्, त्यसरी नै डरलाग्दो मुख भएको वज्रनाभलाई देखेर देवता र यादवहरू डराउँदै भगवान् कृष्णको शरणमा गए। इन्द्र र ऐरावतलाई पछारेको देखेर भगवान् कृष्णले सूर्यजस्तो तेजिलो चक्र प्रद्युम्नलाई दिनुभयो। पिता भगवान् कृष्णलाई शिरले प्रणाम गरी प्रद्युम्नले हर्षविभोर भएर सुदर्शनचक्र ग्रहण गर्नुभयो। त्यसबखत वज्रनाभले रिसाएर सबै देवताहरूलाई आक्षेप लगाएँदै सबैलाई सुनाएर भन्यो ॥२८-३२॥

इन्द्रदमनले भन्यो – हे कृष्ण ! हे मित्रद्रोही प्रद्युम्न ! हे इन्द्र ! हे बलराम ! युद्धको कुनै काम छैन। अहिल्यै म पापी शत्रुहरूलाई मारेर आनन्दसित इन्द्रलोकमा जानेछु। मेरो गदाको चोट सहनुपर्नेछ भन्ने थाहा पाइरख। त्यसलाई सहन सक्यौ भने तीनै लोकका वीर ठहरिनेछौ, सबै लोकका मान्य हुनेछौ। हो इन्द्र ! तिमीले के सम्झन्छौ र ? जसले ममाथि गदा प्रहार गरेको थियो त्यो वीर अहिले किन आएन ? हे वीर तिमी को हौ मलाई बताऊ। मित्रद्रोही महापापी प्रद्युम्नलाई तुरुन्त मारेर धर्म र ईश्वरका सहायताले म परमेश्वरको पुरमा जानेछु ॥३३-३६॥

प्रद्युम्नले भन्नुभयो – हे मूर्ख ! बढी बकबक नगर। दैत्यको धर्मलाई अगाडि सारेर आफ्नो पुरुषार्थ देखाउँदै मसँग लड्। वीर पुरुषहरू युद्धमा शत्रुसँग फूर्ति गर्दैनन्। महारणमा आफ्नो ठूलो शक्ति देखाएर लड्छन्। जो लड्न छोडेर अनावश्यक बकवाद गर्छन् ती वीर होइनन्। जसले युद्धमा आफ्नो पराक्रम देखाउँछन् र लड्छन् तिनीहरू नै वीर हुन् ॥३७-३९॥

---

११. शक्रस्य पतनं प्रेक्ष्य चैरावतञ्च केशवः, इति न.सं.पु.पाठः।
१२. सूर्यप्रतिमसङ्काशञ्चक्रम्, इति न.सं.पु.पाठः।
१३. बोधितः, इति न.सं.पु.पाठः।
१४. यं सह्य वीरतां याथ सर्वलोकेषु पूजकाः, इति न.सं.पु.पाठः।
१५. शक्र ! स्मरसि पूर्वं यदिति गदा प्रहारितम्, इति न.सं.पु.पाठः।
१६. तद्धि स नागतो भूयः कस्त्वं भ्राता वदाऽधुना, इति न.सं.पु.पाठः।
१७. न वल्लसेऽधुना मूढ ! प्रयुध्यस्व मया समम्, इति न.सं.पु.पाठः।
१८. स्वां दर्शयश्च नेतराः, इति न.सं.पु.पाठः।
१९. शूलमानिनः, इति न.सं.पु.पाठः।
२०. युध्यन्ति दर्शन् शक्तिम्, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

एवमुक्त्वा ततस्तौ च युयुधतुर्भृशं पुनः। शस्त्रास्त्रक्षेपणैः क्रोधात् परस्परं जयैषिणौ ॥४०॥
अभून्मुने महद्युद्धं प्रद्युम्नशक्रतापयोः। रथिनोः क्षिप्तशस्त्रास्त्रं तुमुलं लोमहर्षणम् ॥४१॥
जजापातिभृशं जीवो मुनिसिद्धगणैः समम्। प्रद्युम्नजयकामेन जयोऽस्तु ते स्मर ! ब्रुवन् ॥४२॥
जजापेति भृशं शुक्रो दैत्यार्यैः सह चाम्बरे। जयकामेन शक्रारेर्वज्र ! जयोऽस्तु ते वदन् ॥४३॥
चिक्षेप मन्मथश्चक्रं[२१] भानुमन्तञ्च तं प्रति। अधावद् द्योतयन् काष्ठाश्चक्रं भानुरिव क्षये ॥४४॥
तदन्तिकं समासाद्य क्षुरनेमिसुदर्शनम्। अच्छिनोत् खलु दैत्यस्य शक्रारेः कन्धरां भृशम् ॥४५॥
छिन्नशिरास्तदा वज्रः खड्गमुद्यम्य सत्वरम्। यादवानभिदुद्राव कालान्तक इव क्षये ॥४६॥
प्रद्युम्नोऽपि तमालोक्य खड्गहस्तं द्रुतं व्रजन्[२२]। भल्लैर्विभेद दैत्यार्यं स्वके सैन्यपलायिते ॥४७॥
व्यसुः पपात तोये च शक्रतापो महाबलः। शक्रमार्गजलं रुद्ध्वा सच्छिन्नकन्धरो मुने ॥४८॥
भूयश्चिच्छेद कन्दर्पश्चक्रेण तत्कलेवरम्। द्विधा चक्रे पुनस्तत्र गृद्धैश्च कवलीकृतम्[२३] ॥४९॥
ववृषुः पुष्पवर्षाणि कामस्योपरि चाम्बरात्। नेदुर्दुन्दुभयो व्योम्नि तद्यशांसि जगुर्भृशम् ॥५०॥
अपूपुजन्मुदा देवाः कृष्णपुरःसराः स्मरम्। साधु साध्विति सम्भाष्य ब्रुवन्तो रक्षिता वयम्[२४] ॥५१॥
कृष्णाय प्रददौ चक्रं प्रद्युम्नो हि प्रणम्य च। तव शक्त्या हतः पापस्तातेति प्रवदन्मुदा ॥५२॥

---

कार्तिक स्वामीले भन्नुभयो – यति भनेर ती दुबै परस्परमा जित्ने इच्छा राखेर शस्त्रअस्त्रहरू फ्याँक्दै खूबसित युद्ध गर्न थाले। हे अगस्त्य मुनि ! प्रद्युम्न र इन्द्रदमनको ठूलो युद्ध भयो। शस्त्र र अस्त्रहरूको हानाहान भएर मच्चिएको त्यो युद्ध रोमाञ्चित तुल्याउने खालको थियो। बृहस्पतिले ऋषि र सिद्धहरूका साथमा बसेर हे प्रद्युम्न ! तिम्रो जय होस् भन्दै प्रद्युम्नलाई जिताउने उद्देश्यले खूबसित मन्त्र जप गर्न थाले। शुक्राचार्य आकाशमा बसेर हे इन्द्रदमन ! तिम्रो जय होस् भन्दै त्यसलाई जिताउने इच्छाले खूबसित मन्त्र जप गर्न थाले ॥४०-४३॥

प्रद्युम्नले सूर्यजस्तो सुदर्शनचक्र छोडे। त्यो चक्र दिशाहरूलाई उज्यालो तुल्याउँदै दौडिएर गयो। त्यसको नजिकै पुगेर छुराको जस्तो धार भएको सुदर्शनचक्रले महेन्द्रदमन नाम गरेका दैत्यको घाँटी काट्यो। शिर काटिएको वज्रनाभ दैत्य तरवार उठाएर प्रलयकालको यमराजजस्तै गरी यादवहरू भएतर्फ दौडियो। आफ्ना सैन्य भागेपछि तरवार लिएर दौडँदै आएको त्यस दैत्यलाई देखेर प्रद्युम्नले भालाले हिर्काए। शिर काटिएर प्राणमुक्त भएको महाबली इन्द्रदमन दैत्य इन्द्रको मार्गको जलप्रवाहलाई रोक्दै पानीमा पछारियो ॥४४-४९॥

फेरि प्रद्युम्नले चक्र चलाएर त्यसको शरीरलाई दुई टुक्रा पारे। त्यसलाई फेरि साना-साना गासजत्रा टुक्रामा परिणत गरे। आकाशबाट प्रद्युम्नमाथि पुष्पवर्षा भयो। नगराहरू बजे, आकाशमा उनका कीर्तिको गायन भयो। कृष्ण आदि गरिएका देवताहरूले प्रद्युम्नलाई स्यावासी दिँदै तपाईंले हाम्रो रक्षा गर्नुभयो भने र प्रसन्न भएर उहाँको पूजा गरे। हे बुबा ! हजुरको शक्तिले नै यो पापी मऱ्यो भन्दै प्रद्युम्नले श्रीकृष्णलाई नमस्कार गर्नुभयो र हर्षित हुँदै चक्र फिर्ता दिनुभयो ॥५०-५२॥

जसले यो अध्याय सुन्छ त्यसका सबै शत्रुहरू तुरुन्त सदाको लागि नाश हुन्छन्। लडाइँमा त्यसले विजय हासिल गर्छ। ठूलाबडाले पनि कठिन परिश्रमले मात्र प्राप्त गर्न सक्ने कीर्ति उसले पाउँछ ॥५४॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्ड नेपालमाहात्म्यको प्रद्युम्नोत्तरमा रत्नहरणनामक
एकसय बयासियौँ अध्याय पूरा भयो।

---

२१. चिक्षेप सुदर्शनं कामः, इति न.सं.पु.पाठः।
२२. त्वराऽव्रजन्, इति न.सं.पु.पाठः।
२३. ततश्च कवलीकृतः, इति न.सं.पु.पाठः।
२४. नो रक्षिता इति ब्रवन्, इति न.सं.पु.पाठः।

# त्र्यशीत्यधिकशततमोऽध्यायः

## वाग्वतीसहस्रनाम

### अगस्त्य उवाच

सानुजं शक्रतापञ्च निहत्य यदुनन्दने । द्वारवत्यां प्रयाणाय तत्परे सबले हरौ[१] ॥१॥
कथमुवाह वागीशा केनैव पूजिता पुनः । पञ्चवक्त्रश्च तत्क्षेत्रं तत्सर्वं वद मे विभो ॥२॥

### लोमहर्षण उवाच

पृच्छन्तञ्च घटोद्भूतं स्कन्दोऽब्रवीद्वचो मुदा । अभ्यर्च्य साधु चेत्युक्त्वा सर्वं तच्च द्विजोत्तमाः ॥३॥

### स्कन्द उवाच

सर्वदुरितकल्लोलहारिणी पुण्यमालिनी । हराङ्कस्थायिनी तस्यै वागीशायै नमोऽनिशम् ॥४॥
ज्योतिर्लिङ्गे क्षितौ व्यक्ते प्रव्यक्ता वाग्वती जले । तत्क्षेत्रे सरिता व्यक्ते[२] तत्राजग्मुः सुरोत्तमाः ॥५॥
भक्त्याराधितवन्तस्ते पशुपतिञ्च वाग्वतीम् । ऋषिपुरःसरा विप्र ! ब्रह्मविष्णुपुरन्दराः ॥६॥
एकदा दिवसे देवाः समासीनाश्च[३] संसदि । ददृशुर्वाग्वतीं देवीं ज्योतिर्लिङ्गाङ्गनिःसृताम् ॥७॥
द्रवीभूतां महादेवीं स्वच्छकल्लोलशालिनीम् । चित्रात्मनोऽमराः सर्वे तस्थुः किमिति विस्मिताः[४] ॥८॥
तादृग्रूपाञ्च तामार्यां दिव्याङ्गीं दृष्टवान्[५] मुनिः । नारदः परिप्रपच्छ विधिं केयं नदी शुभा[६] ॥९॥
पृच्छन्तं नारदः तत्र ब्रह्माणं संसदि ध्रुवम् । व्याजहार वचो दिव्यं श्रावयन् नारदं प्रति[७] ॥१०॥

---

## अध्याय - १८३

### वाग्वतीका सहस्रनाम

अगस्त्य मुनिले भन्नुभयो – दाजुसहित इन्द्रदमनलाई मारेर यदुकुललाई आनन्द दिने भगवान् कृष्ण आफ्ना दाजु बलरामका साथमा द्वारका जान तयार भएपछि वाग्वती कसरी बगिन् ? शिवजी र त्यस क्षेत्रको पूजा कसले गऱ्यो ? हे प्रभो ? यो सबै मलाई बताउनुहोस् ॥१-२॥

लोमहर्षणले भन्नुभयो – यसरी प्रश्न गर्ने ब्राह्मण अगस्त्य मुनिलाई तिमीले ठीक भन्यो भनेर कार्तिक स्वामीले भन्नुभयो ॥३॥

कार्तिक स्वामीले भन्नुभयो – सारा पापलाई नाश गर्ने, महादेवको काखमा बस्ने र पुण्य दिने ती वाग्वतीलाई बारम्बार नमस्कार छ । पृथ्वीमा ज्योतिर्लिङ्ग प्रकट भएपछि वाग्वती जलका रूपमा प्रकट हुनुभयो । त्यस क्षेत्रमा वाग्वतीका रूपमा गङ्गा प्रकट भएपछि देवताहरू त्यहाँ आए । तिनीहरूले पशुपति र वाग्वतीलाई भक्तिपूर्वक आराधना गरे । हे अगस्त्य मुनि ! ऋषि, ब्रह्मा, विष्णु, इन्द्र आदि देवताहरू एकदिन सभामा बसेका थिए । उनीहरूले त्यस ज्योतिर्लिङ्गको अङ्गबाट निक्लन लागेकी वाग्वतीलाई देखे ॥४-७॥

जलरूपमा बग्न लागेकी, स्वच्छ तरङ्गले युक्त भएकी, महादेवी वाग्वतीलाई देखेर यो के हो भन्दै देवताहरू छक्क परे । यस्तो रूप भएकी दिव्यस्वरूपा वाग्वतीलाई देखेर नारद ऋषिले भक्तिपूर्वक नमस्कार गर्नुभयो र आश्चर्यचकित हुँदै भक्तिपूंक यी को हुन् ? भनेर ब्रह्माजीसँग सोध्नुभयो । ब्रह्माजीको सभामा सोध्न लागेका नारदजीलाई ब्रह्माजीले दिव्य वाणी बोल्दै वाग्वतीको वृत्तान्त बताउनुभयो ॥८-१०॥

---

१. द्वारवत्याः प्रयाणे च सबले सानुजे हरौ, इति न.सं.पु.पाठः ।
२. क्षेत्रे सरिता व्यक्ताय, इति न.सं.पु.पाठः ।
३. निषेदन्तश्च, इति न.सं.पु.पाठः ।
४. ह्यचिरे, इति न.सं.पु.पाठः ।
५. प्राणितो, इति न.सं.पु.पाठः ।
६. पप्रच्छ पङ्कजं काऽसौ चित्रात्मेति सुभक्तितः, इति न.सं.पु.पाठः ।
७. तद्वृत्तान्तं स्वसूनवे, इति न.सं.पु.पाठः ।

ब्रह्मोवाच

आद्यशीर्षे स्थिता देवी साद्याननविनिःसृता। याद्यविनिःसृता विद्या सैवेशाङ्गविनिःसृता ॥११॥
आषाढसितपक्षे च द्वादश्यां मैत्रयुग्बुधे। हरमूर्ध्नि स्थिता गङ्गा मुखादवततार वै ॥१२॥
श्रवणेन युते भाद्रे सावित्र्याः सम्भवो विधेः[८]। कार्त्तिके रेवतीयुक्ते गायत्र्याः प्रभवस्तथा[९] ॥१३॥
तन्मानसोद्भवा गङ्गास्तासां योगाद्धि वाग्वती। वाग्वती शिवगङ्गा च ब्रह्मसरस्वती शिवा ॥१४॥
वाग्वती सरितां श्रेष्ठा वाग्वती लोकपावनी। वाग्वती हृद्यदात्री च वाग्वती दुःखतारिणी ॥१५॥
स्मरणाद् मनसा सद्यो मुच्यते दर्शनात्पुनः। नेत्रादिजैर्नरः पापैः स्पर्शनादङ्गजैस्तथा ॥१६॥
आचमनाद्वचोजातैः स्नानाज्जन्मार्जिताशुभैः। सहस्रनामपठनाद् सहस्रजन्मजाशुभैः ॥१७॥
कदाचिद्दैवयोगेन स्नात्वा च वाग्वतीजले। तन्मनुस्मरणाद् भक्त्या नरो नारायणो भवेत् ॥१८॥
स्मरणाद्दर्शनं श्रेष्ठं दर्शनात्स्पर्शनं वरम्। स्पर्शादाचमनं श्रेष्ठं स्नानं पाठक्रमान् मनोः ॥१९॥
मन्त्ररूपां महादेवीं नाभक्ताय प्रकाशयेत्। नामानि जलरूपाया भुक्तिमुक्तिप्रदानि च ॥२०॥
रहस्यं सर्वलोकानां कलौ प्राप्ते विशेषतः। प्रत्यक्षं फलदा सद्यो मुमुक्षूणाञ्च वाग्वती ॥२१॥
देव्याः पानीयरूपाया ध्येयं नाम्नां सहस्रकम्। विन्देत् पाठाच्च योगाच्च मोक्षं वक्ष्यामि नारद[१०] ॥२२॥
अखिलं प्रथमे विद्या वाग्रूपायै च हृन्मनुम्। वागीश्वर्यै ह्यखण्डं प्राक् शिरोमन्त्रं प्रयोजयेत् ॥२३॥
सरस्वत्यै पुरो ब्रह्म चान्ते शिखामनुं न्यसेत्। शिवगङ्गां तथा विष्णुं न्यसेद्धि कवचं मनुम् ॥२४॥
वाग्वत्यै च पुरो रुद्रं नेत्रबीजं न्यसेत्पुनः। वागीशायै तथा सर्वमस्त्रमन्त्रं न्यसेत्ततः ॥२५॥
सर्वादौ योजयेत्तारमृषिं छन्दश्च संन्यसेत्।

---

ब्रह्माजीले भन्नुभयो – जो आद्यशिर अर्थात् महादेवको शिरमा बसेकी थिइन्, तिनै आज उहाँको मुखबाट निस्किइन्। जुन मुखबाट निस्केकी थिइन्, तिनै विद्या आज उहाँको अङ्गबाट निक्लिइन्। आषाढको शुक्लपक्षको द्वादशीका दिन मैत्रनक्षत्रले युक्त भएको बुधबारका दिन महादेवको शिरमा रहेकी गङ्गा मुखबाट निक्लिइन्। त्यस्तै भदौको श्रवणनक्षत्रमा ब्रह्माजीबाट सावित्री पैदा भइन्। कार्तिकमासको रेवतीनक्षत्रमा गायत्री पैदा भइन्। उहाँको मनबाट निस्किएका शिवगङ्गा, ब्रह्मसरस्वती र शिवा, यी तीनै मिलेर वाग्वतीका रूपमा परिणत भएका छन् ॥११-१४॥

वाग्वती नदीहरूमा श्रेष्ठ छिन्। वाग्वतीले दुनियाँलाई पवित्र तुल्याउँछिन्। यिनले इच्छा अनुसारको फल दिन्छिन् र दुःखलाई हटाइदिन्छिन्। वाग्वतीलाई सम्झनाले मनबाट भएको पाप तुरुन्त हट्छ। दर्शन गऱ्यो भने आँखाबाट भएको पाप नाश हुन्छ। पानी छोयो भने अङ्ग-प्रत्यङ्गबाट भएको पाप नष्ट हुन्छ। वाग्वतीको जल आचमन गऱ्यो भने बोलीबाट भएको पाप नाश हुन्छ। वाग्वतीको जलमा स्नान गऱ्यो भने जन्मभरि गरेका पापहरू छुट्दछन्। वाग्वतीको सहस्रनाम पाठ गऱ्यो भने हजार जन्ममा गरेका पापहरूबाट मुक्ति मिल्छ ॥१५-१७॥

कुनै दिन दैवसंयोगले वाग्वतीको जलमा स्नान गरेर भक्तिपूर्वक उनको मन्त्र सम्झियो भने मानिस नारायण हुन्छ। सम्झनुभन्दा दर्शन गर्नु असल हो। दर्शन गर्नुभन्दा जल स्पर्श गर्नु असल हो। जल स्पर्श गर्नुभन्दा आचमन गर्नु असल हो भने आचमन गर्नुभन्दा सहस्रनामको पाठ गर्नु झन् उत्तम हो, पाठ गर्नुभन्दा मन्त्र जप्नु अझ असल हो। वाग्वती मन्त्रस्वरुपिणी छिन्। जलको रूप लिने वाग्वतीका भुक्ति र मुक्तिदायक नामहरू अभक्तलाई कहिल्यै पनि भन्नुहुँदैन। यो सबै लोकमा गोप्य राख्नुपर्छ। यी वाग्वती विशेष गरेर कलियुग लागेपछि मोक्ष चाहने व्यक्तिहरूलाई तुरुन्त फल उपलब्ध गराउँछिन्। जल भएर बगेकी यी वाग्वतीका हजार नाम छन्। तिनको स्मरण अथवा पाठ गर्नाले मोक्ष प्राप्त हुन्छ। हे नारद ! म त्यो कुरा बताउँछु, सुन, वाग्वती सहस्रनामको पाठ गर्दा- अखिलविद्यावाग्रूपायै शिरसे नमः, ॐ वागीश्वर्यै स्वाहा, ॐ सरस्वत्यै शिखायै वौषद्, ॐ शिवगङ्गायै विष्णवे कवचाय हुम्, ॐ वाग्वत्यै नेत्राभ्याम् वषद्, ॐ वागीशायै फट् भनी न्यास गर्नुपर्दछ। न्यास गरेपछि विनियोग लिनुपर्दछ ॥१८-२५॥

---

८. तद्भाद्रश्रवणात्के प्राक् सावित्री संभवा विधेः, इति न.सं.पु.पाठः। ९. गायत्री प्रभवा तथा, इति न.सं.पु.पाठः।
१०. पाठाद्योगाल्लभेन्मोक्षं शृणु वक्ष्यामि नारद, इति न.सं.पु.पाठः।

ॐ श्रीवाग्वत्याः सहस्रनामस्तोत्रस्य गायत्रीच्छन्दो वागीश्वरी देवता वाग्भवो बीजं कामराजो लज्जा कीलकं शिवगङ्गा बुद्धिः ब्रह्मसरस्वतीशक्तिश्चतुर्वर्गसाधने विनियोगः ॥२६॥
लज्जाबीजं त्रिधालिख्य वाग्भवञ्च पुनस्त्रिधा। धर्मबीजं त्रिधा ध्रीं ध्रीं नेत्रवह्निसमायुतम् ॥२७॥
लज्जात्रयं गणेशाख्यं ग्रीं ग्रीं ग्रीमिति पूर्ववत्। शारदायै नमश्चान्ते सिद्धः सरस्वतीमनुः ॥२८॥
सर्वोपरि तथोङ्कारं जपेद्वागीश्वरो भवेत्। प्रणवश्च त्रिधा वाणीलज्जाधर्मत्रयं गणम् ॥२९॥
शारदायाश्च तन्मन्त्रजपनाद् वाक्पतिर्भवेत्। करपुटे जलं धृत्वा त्रयोदश्यां निरामिषः ॥३०॥
वाग्वत्याः प्रजपन् मन्त्रं कविराजो भवेद् द्रुतम्। पुण्डरीकसमासीनां कर्पूरेन्दुसमोज्ज्वलाम् ॥३१॥
त्र्यक्षां स्मिताननां ध्येयां सर्वालङ्कारशोभनाम्। मालां वरं दधानाञ्च पुस्तकमभयं करैः ॥३२॥
वाग्देवीं वाग्वतीं ध्यायेच्चन्द्रकलाद्रवत्सुधाम्। ॐ वाग्वती वाग्भवा वाणी वागीश्वरी वचोवरा ॥३३॥
वागीशा वरदा ब्राह्मी वाग्विभूतिश्च भारती। वागीशवल्लभा भाषा गीरूपा वाक्स्वरूपिणी ॥३४॥
वाग्रूपिणी च चैतन्या वाग्वागीश्वरवल्लभा। वाचोर्मिमालिनी वाहा चार्वाक्पापोर्मिनाशिनी ॥३५॥

---

विनियोग– यस वाग्वती सहस्रनाम मन्त्रका गायत्रीछन्द, वागीश्वरी देवता, ऐं बीज, क्लीं ह्रीं कीलक, शिवगङ्गा बुद्धि र ब्रह्मसरस्वती शक्ति हुन्, म धर्म, अर्थ, काम र मोक्षको सिद्धिका लागि विनियोग गर्दछु ॥२६॥

ॐ ह्रीं ह्रीं ह्रीं स्वाहा, ॐ ऐं ऐं ऐं, ॐ ध्रीं ध्रीं ध्रीं स्वाहा, ॐ ह्रीं ह्रीं ह्रीं स्वाहा, ॐ ग्रीं ग्रीं ग्रीं स्वाहा, ॐ शारदायै नमः। यसरी यी बीजमन्त्रको उच्चारण गर्नुभन्दा पहिले ॐ को प्रयोग गर्नुपर्दछ। जसले यो मन्त्र जप्दछ त्यो व्यक्ति वाणीको स्वामी अथवा बृहस्पतिसमान बन्दछ। ॐॐॐ ऐं ऐं ऐं ह्रीं ह्रीं ह्रीं ध्रीं ध्रीं ध्रीं शारदायै स्वाहा, यस मन्त्रको जप गर्नाले मानिस वाणीको स्वामी बन्दछ। त्रयोदशीका दिन हविष्य भोजन गरी हातमा जल लिएर जसले वाग्वतीको उक्त मन्त्रको जप गर्दछ त्यो छिटै कविराज बन्दछ ॥२७–३१½॥

सेतो कमलमा विराजमान हुनुभएकी, कपूर र चन्द्रमासमान उज्ज्वल वर्णकी, त्रिनयनी, मन्द मुस्कानले सुहाएकी, सबै किसिमका अलङ्कारद्वारा अलङ्कृत भएकी, सबै भक्तहरूद्वारा ध्यान गर्न योग्य, आफ्ना हातहरूमा माला, पुस्तक र वरमुद्रा धारण गरिरहेकी एवं चन्द्रकिरण पर्दा अमृतधारा प्रकट गरिरहेकी वाणीकी देवी वाग्वतीको ध्यान गर्नुपर्दछ ॥३१–३२½॥

## वाग्वती सहस्रनामस्तोत्रम्

(१) ॐ वाग्वती– ब्रह्मरूपा वाणीले सुहाएकी, (२) वाग्भवा– सरस्वतीबाट पैदा भएकी, (३) वाणी– परा, पश्यन्ती, मध्यमा र वैखरी वाणीका रूपमा रहेकी, (४) वागीश्वरी– वाणीकी अधिष्ठात्री, (५) वचोवरा– उत्तम वचनका रूपमा रहेकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥३३॥

(६) वागीशा– वाणीका उपासक बृहस्पतिका रूपमा रहेकी (७) वरदा– उपासकहरूलाई विद्या आदिको वर प्रदान गर्ने, (८) ब्राह्मी– ब्रह्माजीकी सुपुत्रीका रूपमा सम्मानित, (९) वाग्विभूति– वाणीको ऐश्वर्यले सुहाएकी सरस्वती, (१०) भारती– सम्पूर्ण वाङ्मयलाई धारण गर्ने ब्रह्माजीकी शक्ति, (११) वागीशवल्लभा– वाणीका साधक उत्तम पुरुषहरूकी प्यारी अथवा भगवान् शिवकी प्यारी, (१२) भाषा– संसारका अनेक भाषाबोलीहरूको प्राणतत्त्वका रूपमा रहेकी, (१३) गीरूपा– जसलाई सबैले ग्रहण गर्दछन्, त्यस्ती सबैको हृदय खोल्ने वचनका रूपमा रहेकी, (१४) वाक्स्वरूपिणी– कलकल ध्वनिका साथ बग्दै आफू वाणीकै स्वरूपमा रहेको तथ्य प्रकाशित गरिरहेकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥३४॥

(१५) वाग्रूपिणी– वाणीकै रूपमा रहेकी, (१६) चैतन्या– वाणीद्वारा सबैमा चेतना सञ्चार गर्नाले चैतन्यरूपिणी, (१७) वाग्वागीश्वरवल्लभा– वाणी र वाणीका अधिपतिकी प्यारी, (१८) वाचोर्मिमालिनी– तरङ्गका रूपमा वाणीको माला धारण गर्ने, (१९) वाहा– वाङ्मय, भाषा र जनबोलीको माध्यम संसारलाई वहन गर्नुहुने अथवा जलतत्त्व प्रदान गरी संसारका प्राण धारण गर्नुहुने, (२०) अर्वाक्–पापोर्मिनाशिनी– ब्रह्मतत्त्वबाट छुटेपछि मायामोहित जीवहरूले गरेका पापका तरङ्गमालालाई नाश गर्नुहुने अथवा आफूमा आई स्नान गर्ने पापीहरूका पापतरङ्ग नाश गर्नुहुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥३५॥

वाग्देवेश्वरकण्ठस्था वाग्देवी वाग्वतीश्वरी। वाग्भूतार्णप्रवाहा च वागैश्वर्या सरस्वती ॥३६॥
अणिमारुन्धती चार्द्धा वागैश्वर्यावतारिणी। अशरीरार्द्धमात्रा च ह्यन्नरूपाघहारिणी ॥३७॥
अतिसौम्याच्युताशोका चार्चिताचलवाहिनी। अत्युग्राचलसम्भिन्ना चाच्छिन्नाच्छिन्नवाहिनी ॥३८॥
आनन्दिनी स्वभक्तानामात्मान्तस्था च जीविनाम्। आनन्दाऽमृतवर्णाभा चाद्याननसमुद्भवा ॥३९॥
आनन्दोर्मिप्रवाहा च ह्यपां देवी पयोमयी। आकाशवाहिनी चार्या चाकरा शर्मदोर्मिणाम् ॥४०॥
इच्छाशक्तिर्महेन्द्राणी चेन्दिरा हरिवल्लभा। ईप्सितार्थप्रदा चेन्दुरिङ्गितज्ञा शिवप्रिया ॥४१॥

---

(२१) वाग्देवेश्वरकण्ठस्था- वाणीका देवता ब्रह्माजीका परमेश्वर सदाशिवको कण्ठमा निवास गर्ने, (२२) वाग्देवी- वाणीकी सरस्वतीका रूपमा प्रवाहित हुने, (२३) वाग्वतीश्वरी- मधुर वाणीकी स्वामिनी नारीहरूकी ईश्वरी, (२४) वाग्भूतार्णप्रवाहा- वाणीरूप जल प्रवाहित गर्ने, (२५) वागैश्वर्या- जलरूप विभूतिद्वारा सुहाएकी, (२६) सरस्वती- जलरूप वाणीकी स्वामिनी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥३६॥

(२७) अणिमा- अष्टसिद्धिमध्ये अणिमा सिद्धिकै सरह वाणीरूपमा र जलरूपमा सूक्ष्मतिसूक्ष्म रूप धारण गर्ने, (२८) अरुन्धती- वशिष्ठकी धर्मपत्नी अरुन्धतीको रूपमा आकार लिएकी, (२९) अर्धा- ब्रह्मका शिव र शक्तिनामक दुई तत्त्वमध्ये शक्तिरूपा, (३०) अगैश्वर्यावतारिणी- हिमालयकी विभूति बनेर पुत्रीका रूपमा अवतार लिनुहुने, (३१) अशरीरा- निराकार वाणीका रूपमा रहने अथवा जलरूपमा प्रवाहित हुने, (३२) अर्धमात्रा- ॐकारमा अर्धमात्राका रूपमा विराजमान, (३३) अन्नरूपा- जलरूप लिएर अन्नका रूपमा परिणत हुने अथवा ब्रह्मरूपा, (३४) अघहारिणी- स्नानकर्ताजनहरूका पाप नाश गर्नुहुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥३७॥

(३५) अतिसौम्या- अत्यन्त सौम्य वा सौजन्यपूर्ण स्वरूप भएकी, (३६) अच्युता- कहिल्यै धर्मबाट च्युत नहुने, सार्वकालिकरूपमा सच्चिदानन्दमय स्वरूपमा रहेकी, (३७) अशोका- चिन्ता, विषादरहित आनन्दमय स्वरूपमा रहेकी, (३८) अर्चिता- सबैद्वारा जलदेवीका रूपमा, शिवप्रियाका रूपमा र वाङ्मयधामका रूपमा पूजित भएकी, (३९) अचलवाहिनी- वाग्वतीप्रभव गिरिशिखरबाट लोककल्याणका लागि प्रवाहित भएकी, (४०) अत्युग्रा- पापीहरूलाई उग्ररूप लिएर मूर्खता र जडता प्रदान गर्ने, (४१) अचलसम्भिन्ना- सुन्दरीजलमाथिको पहाडबाट छुट्टिएर आएकी अथवा अविनाशी ब्रह्मबाट छुटेर शक्तिरूपमा प्रकट भएकी, (४२) अच्छिन्ना- पर्वतबाट छिन्न भए तापनि ब्रह्मतत्त्वमा जोडिएर रहेकी अथवा भाषा, भाषिका, शास्त्र आदिका रूपमा बेग्लाबेग्लै रूप लिए पनि वागीश्वरसँग सित्यसम्बन्ध कायम गर्ने, (४३) अच्छिन्नवाहिनी- प्रकृतिभित्र रही वाणी वा जलका रूपमा अनेक स्वरूप लिए पनि परब्रह्मसँग शाश्वत सम्बन्ध कायम गरी प्रवाहित भइरहेकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥३८॥

(४४) स्वभक्तानन्दिनी- आफ्ना भक्तहरूलाई परम आनन्द प्रदान गर्ने, (४५) जीवान्तःस्था- सम्पूर्ण जीवहरूभित्र जीवात्माका रूपमा रहेकी, (४६) आनन्दा- आत्मानन्दस्वरूप भएर रहेकी, (४७) अमृतवर्णाभा- अमृतझैँ शुक्ल स्वच्छरूपमा देखिने, (४८) आद्या- ब्रह्माण्डकी आदिशक्ति, (४९) आननसमुद्भवा- ब्रह्माजीका मुखबाट प्रकट भई वेदवाणीका रूपमा रहेकी अथवा सुन्दर शैलमा भगवान् शिवको मुखबाट प्रकट भएकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥३९॥

(५०) आनन्दोर्मिप्रवाहा- सरस्वतीका रूपमा वाङ्मयद्वारा ज्ञानानन्दका तरङ्ग प्रवाहित गर्ने अथवा लोकलाई आनन्द दिने तरङ्गमय जल प्रवाहित गर्ने, (५१) अपांदेवी (आपोदेवी)- जलदेवीका रूपमा रहेकी, (५२) पयोमयी- संसारलाई पालनपोषण गर्ने आमाका रूपमा रहेर दुग्धामृत पियाउने अथवा जलरूप जीवनले ओतप्रोत भएकी, (५३) आकाशवाहिनी- संसार शून्यमय हुँदा सर्वप्रथम सरस्वतीका रूपमा वा वाणीका रूपमा प्रकट भएकी, (५४) आर्या- सर्वोत्तम दैवी गुणगरिमाले सम्पन्न भएकी, (५५) शर्मदोर्मीणाम् आकरा- आनन्द वा सुखदायक जलतरङ्गकी खजाना अथवा आननन्ददायक वाणीका तरङ्गहरूकी खजाना, (५६) इच्छा- मानवहृदयमा पवित्र इच्छाका रूपमा प्रकट हुने, (५७) शक्तिः- जलरूपा शक्ति र वाणीरूपा शक्तिका रूपमा विराजमान, (५८) इन्द्राणी- इन्द्रकी रानीका रूपमा अथवा आनन्दमयी शक्तिका रूपमा रहेकी, (५९) इन्दिरा- लक्ष्मीका रूपमा प्रकट हुने, (६०) हरिवल्लभा- नारायणकी प्यारी अथवा इन्द्रकी प्यारी, (६१) ईप्सितार्थप्रदा- ज्ञानदायिनी वा पापनाशिनी, (६२) इन्दुः- चन्द्रमाझैँ अमृत शीतलता प्रदान गर्ने, (६३) इङ्गितज्ञा- वाणीकी अधिष्ठात्री बनेर मानवमनको भावबोध गरी त्यसलाई शब्दमा प्रकट गर्ने, (६४) शिवप्रिया- भगवान् शिवकी प्यारी अथवा सर्वकल्याण रुचाएर तदनुसार लीला गर्ने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥४०-४१॥

ईश्वरी भुव ईशानी चेश्वरमोदकारिणी। ईशानी शाङ्करी शान्ता महेशानमुखोद्भवा[११] ॥४२॥
उग्रास्या चोग्ररूपा च ह्युग्रवरप्रदा ह्युमा। उग्रार्द्धाङ्गनिषण्णा च चोग्रशीर्षावतारिणी ॥४३॥
ऊर्ध्वेश्वरी सदोर्ध्वस्था किल्विषन्यूनकारिणी[१२]। ऊशीरगन्धसुप्रीता ह्युच्चवरप्रदाग्रणीः ॥४४॥
ऊरूपा सर्वसंहारे चोर्ध्वगतिप्रदर्शिनी। ऊर्ध्वगा चोग्रभार्या च ह्युर्ध्वस्थानप्रदायिनी ॥४५॥
ऋग्यजुःसामाथर्वात्मा[१३] ऋवर्णा ऋद्धिरूपिणी। ऋकाराऽदितिरूपा च ऋणहन्त्री ऋतूत्सवा ॥४६॥

---

(६५) ईश्वरी– सकल ब्रह्माण्डकी स्वामिनी, (६६) भुव ईशानी– परा र अपरा शक्तिद्वारा संसारमाथि शासन गर्ने, (६७) ईश्वरमोदकारिणी– परमेश्वर पशुपतिलाई हर्ष प्रदान गर्ने, (६८) ईशानी– पार्वतीका रूपमा प्रकट हुने, (६९) शाङ्करी– लोकशङ्कर भगवान् शङ्करकी शक्ति, (७०) शान्ता– शान्त स्वभाव भएकी अथवा शान्तिकी मुहान, (७१) ईशानमुखसम्भवा– वाग्द्वारमा भगवान् शङ्करको मुखबाट प्रकट भएकी अथवा लोकपितामह ब्रह्माजीको मुखबाट वेदमाताका रूपमा प्रकट भएकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥४२॥

(७२) उग्रास्या– वर्षाकालमा डरलाग्दो वेगका साथ प्रवाहित हुने अथवा सरस्वतीका रूपमा रही ज्ञानद्वारा कालो अज्ञान ध्वंस गर्न उग्ररूप धारण गर्ने, (७३) उग्ररूपा– वर्षाकालमा विशाल र भयङ्कररूप लिएर गाउँ (खेत) बगाउने अथवा अज्ञानी मधु र कैटभलाई दलन गर्न घोररूप लिनुहुने, (७४) उग्रवरप्रदा– दुष्ट दानवहरूलाई विध्वंस गर्न उग्रवर प्रदान गरी घमण्डी बनाएर स्वयं वा अरु देवताद्वारा संहार गर्नुहुने, (७५) उमा– हिमालयकी पुत्रीका रूपमा प्रकट हुनुहुने, (७६) उग्रार्धाङ्गनिषण्णा– गौरी बनेर भगवान् शिवको काखमा बस्ने, (७७) उग्रशीर्षावतारिणी– गङ्गाका रूपमा शङ्करको जटाजूटमा खस्नुहुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥४३॥

(७८) ऊर्ध्वेश्वरी– माथिल्ला लोकहरूकी स्वामिनी बनेर स्वर्गङ्गाका रूपमा रहने, (७९) ऊर्ध्वस्था– सधैँ ऊर्ध्वलोकमा देवशक्तिका रूपमा रहने, (८०) ऊनकिल्किषकारिणी– पापीहरूले आराधना गर्दा तिनका पापहरूलाई कम बनाउँदै लैजानुहुने, (८१) ऊशीरगन्धसम्प्रीता– खसको गन्धद्वारा परम प्रसन्न हुने, (८२) ऊः– संसारको रक्षाका लागि रक्षा र दयाका रूपमा रहेकी, (८२) उच्चवरप्रदा– अत्युत्तम वर दिनुहुने, (८३) अग्रणीः– देवीहरूमध्ये अग्रगण्य भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥४४॥

(८४) सर्वसंहारे ऊरूपा– जगत्को संहारकालमा महादेवको रूप लिनुहुने, (८५) ऊर्ध्वगतिप्रदर्शिनी– आफ्ना भक्तहरूलाई ज्ञानोपदेश प्रदान गरी आत्मप्राप्तिको गन्तव्य देखाउनुहुने, (८६) ऊर्ध्वगा– सबैभन्दा माथि रहेको सत्य मृत्युका रूपमा विराजमान, (८७) उग्रभार्या– भगवान् रुद्रकी भार्या रुद्राणीका रूपमा रहने, (८८) ऊर्ध्वस्थानप्रदायिनी– आफ्ना भक्त याज्ञवल्क्य आदिलाई ब्रह्मलोकमा पुऱ्याउनुहुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥४५॥

(८९) ऋगात्मा– ऋग्वेदका रूपमा रहेकी, (९०) यजूरूपा– यजुर्वेदका रूपमा रहेकी, (९१) सामात्मा– सामवेदका रूपमा रहेकी, (९२) अथर्वात्मा– अथर्वरूपमा रहेकी अथवा ॐकारतुल्य अथर्वपदद्वारा वाच्य भएकी, (९३) ऋवर्णा– ब्रह्मा, विष्णु, रुद्र र सदाशिवको वाचक ऋकारका रूपमा रहेकी अथवा बिजुलीझैँ उज्यालो कमलडाँठको सूतझैँ मसिनो र ज्ञानप्रदान गर्ने ब्रह्मनाडीका रूपमा रहेकी, (९४) ऋद्धिरूपिणी– गणेशकी पत्नी ऋद्धिका रूपमा वा घरघरमा समृद्धिका रूपमा रहेकी, (९५) ऋकारा– रातो विद्युल्लताको आकारमा चम्किने ज्ञानमूर्ति देवी, (९६) अदितिरूपिणी– ब्रह्मरूपिणी, (९७) ऋणहन्त्री– आराधना गर्नेहरूलाई सम्पूर्ण ऋणबाट मुक्त गराउनुहुने, (९८) ऋतूत्सवा– वसन्तको शुभारम्भ हुँदा वसन्तपञ्चमी तिथिमा वसन्तोत्सव मनाउनुहुने यद्वा सारस्वतोत्सव मनाउनुहुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥४६॥

---

११. ईशानमुखसंभवा, इति न.सं.पु.पाठः।
१२. चोनकिल्विषकारिणी, इति न.सं.पु.पाठः।
१३. ऋग्यजुस्थ सामात्मा, इति न.सं.पु.पाठः।

ऋकारमुखसम्भूता ऋवर्णात्मामरप्रसूः। लृकारसंस्तुताऽनेका लृवर्णसेवितारिहा ॥४७॥
एका चैकाररूपा सा ह्येकारा मदनोत्सवा। एकारस्था समैकास्या चैकाधारा बहुश्रिता ॥४८॥
ऐकारवल्लभा चैन्द्री ह्यैकारा वामलोचना। ऐकारात्माऽनेकाध्वा चैन्द्रीगणप्रसेविता ॥४९॥
ॐकारस्था तथोङ्कारा ॐकारा श्रुतिभूषणा। ॐकारवक्त्रसम्भूता ॐकारपूर्वजप्रिया ॥५०॥
और्ध्वरेतोर्चिता सौर्व्वी ह्यौर्ध्वदेशफलप्रदा। औत्तानपादसम्प्रीता और्वासमौर्वशीप्रिया ॥५१॥
अम्बिकाम्बालिकानन्ता ह्यर्णवाध्वरशीर्षगा। अङ्कुशधारिणी साम्बा ह्यन्नपूर्णान्नकारिणी ॥५२॥

---

(९९) ऋकारमुखसम्भूता- भैरवरूप शिवको मुखबाट पैदा भएकी, (१००) ऋवर्णात्मा- देवमाताका रूपमा रहेकी, (१०१) लृकारसंस्तुता- पृथिवीद्वारा सेवित, (१०२) अनेका- एउटी महाशक्ति वा आद्याशक्ति भए पनि अनेक शक्तिका रूपमा प्रकट हुने, (१०३) लृवर्णसेविता- देवमाताद्वारा उपास्या, (१०४) अरिहा- अज्ञानरूप शत्रुको विनाश गर्नुहुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥४७॥

(१०५) एका- अद्वितीय ब्रह्मरूपमा रहेकी, (१०६) ऐकाररूपा- शिवजीका रूपमा रहनुहुने, (१०७) एकारा- विष्णुका रूपमा रहनुहुने, (१०८) मदनोत्सवा- वसन्तपञ्चमी वा श्रीपञ्चमीमा मदनोत्सव वा वसन्तोत्सव मनाउनुहुने, (१०९) एकारस्था- विष्णु भगवान्‌का प्यारा देवताहरूका साथ वैष्णवी शक्तिका रूपमा रहेकी, (११०) समा- सर्वत्र समव्यवहार गर्ने जगदम्बा, (१११) एकास्या- ब्रह्मरूप वा ज्ञानरूप एउटामात्र मुख भएकी, (११२) एकाधारा- परब्रह्म परमात्मा रूप एउटा मात्र आधारमा उँभिएकी, (११३) बहुश्रिता- एउटा आधारमा अडिएर प्रत्येक प्राणीको सम्पर्कमा रहने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥४८॥

(११४) ऐकारवल्लभा- भगवान् शिवकी प्रिया, (११५) ऐन्द्री- इन्द्राणीका रूपमा वा पूर्वदिशाका रूपमा रहेकी, (११६) ऐकारा- शिवरूपा, (११७) वामलोचना- सुलोचना वा अतिसुन्दरी, (११८) ऐकारात्मा- शिवस्वरूपा, (११९) आम्नायसेविता - पूर्वाम्नाय, उत्तराम्नाय, दक्षिणाम्नाय एवं पश्चिमाम्नायजस्ता अनेक मार्गद्वारा सेवा गरिएकी, (१२०) ऐन्द्रीगणप्रसेविता- इन्द्रको स्तुति एवं प्रार्थनामा आधारित वेदका ऋचाहरूद्वारा सेवा गरिएकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥४९॥

(१२१) ॐकारस्था- प्रणवमा अर्धमात्राका रूपमा रहेकी, (१२२) ॐकारा- ब्रह्मरूपा, शिवरूपा वा प्रणवरूपा, (१२३) ॐकारा- ब्रह्मा, विष्णु, रुद्र र शक्तिकी पुञ्जीभूत स्वरूप, (१२४) श्रुतिभूषणा- गायत्री वा ॐकारको गहनाका रूपमा रहेकी, (१२५) ॐकारवक्त्रसम्भूता- ॐकाररूप परमात्माको मुखबाट पैदा भएकी, (१२६) ॐकारपूर्वजप्रिया- ॐकारभन्दा पूर्ववर्ती परमात्माकी प्रिया भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥५०॥

(१२७) और्ध्वरेतोऽर्चिता- ऊर्ध्वरेता योगीहरूद्वारा पूजित, (१२८) और्वी- पृथिवीपुत्री भई वाग्वतीका रूपमा पैदा भएकी, (१२९) और्ध्वदेहफलप्रदा- देहान्तमा साधकलाई उत्तम फल दिने, (१३०) औत्तानपादसम्प्रीता- उत्तानपादका छोरा ध्रुवमा प्रीति गर्ने, (१३१) और्वसमा- भृगुवंशी ऋषि और्वसमान, (१३२) उर्वशीप्रिया- उर्वशीकी प्रिया भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥५१॥

(१३३) अम्बिका- महाभारतकी पात्र अम्बिकाका रूपमा रहेकी, (१३४) अम्बालिका- महाभारतकी पात्र अम्बालिकासमान, (१३५) अनन्ता- अन्तहीन स्वरूप र लीला भएकी, (१३६) अर्णवा- ज्ञानको सागररूपमा रहेकी, (१३७) अध्वरशीर्षगा- यज्ञहरूमा वेदवाणीका रूपमा शीर्षस्थानमा रहने, (१३८) अङ्कुशधारिणी- मर्यादा र अनुशासन कायम गर्दा मात्र सम्पूर्ण कार्य सफल हुन्छन् भन्ने शिक्षा दिन हातमा अङ्कुश धारण गर्नुहुने, (१३९) अम्बा- संसारकी आमा, (१४०) अन्नपूर्णा- दश प्रकारका सिद्धविद्यामध्ये एक, अन्नपूर्णा भगवतीका रूपमा रहेकी (कुब्जिका, चण्डिका, बाला, सिद्धलक्ष्मी, सरस्वती, अन्नपूर्णा, गायत्री, पार्वती, अपराजिता र विन्ध्यवासिनीलाई सिद्धविद्या मानिएको छ), (१४१) अन्नकारिणी- वाग्वतीका रूपमा प्रवाहित भई सिंचाईद्वारा खेतमा प्रशस्त अन्न उत्पादनमा सहयोग गर्ने अथवा ब्रह्मविद्याद्वारा साधकलाई ब्रह्मसाक्षात्कार गराउने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥५२॥

अः रुद्रवक्त्रसञ्जाता अः रूपा शिववल्लभा। अः प्रोक्ता चैनसां शास्त्री अनङ्गारिविनोदिनी ॥५३॥
कलाधारा कलारूपा कौमुदी कालभैरवी। कमला कामिनी काली कुल्लुका कुसुमप्रिया ॥५४॥
कलावती करालास्या कैलासस्था कलानिधिः। कामाख्या कुलकान्ता च कामदा कामचारिणी ॥५५॥
कामधेनुः कृशाङ्गी च कालिन्दी कुञ्जरेश्वरी। कान्तिकाया च काञ्चीस्था चालकाकूटवाहिनी ॥५६॥
कुलवती कुटिलाङ्गी कोटराक्षी कपालिनी। कामेश्वरी च कङ्काली कीर्त्तिदा कामसुन्दरी ॥५७॥
कामार्त्ता कामरूपा च करुणा कुलदेवता। कुलिशाङ्गी कला काष्ठा कुमारी कमलेक्षणा ॥५८॥

---

(१४२) अः-रुद्रवक्त्रसंञ्जाता- भगवान् रुद्रका पाँचवटा मुख ब्रह्मबाट पैदा भएकी शक्तिका रूपमा विराजमान, (१४३) अः-रूपा- श्रीकण्ठ शिवको कण्ठश्रीका रूपमा रहेकी, (१४४) शिववल्लभा- शिवप्रिया, (१४५) अः-प्रोक्ता चैनसां शास्त्री- पाप नाश गर्ने जलदेवीका रूपमा रहेकी, (१४६) अनङ्गारिविनोदिनी- कामदेवका शत्रु भगवान् शिवकी केलिप्रिया भगवती, (१४७) कलाधारा- समग्र कलाकी आधार भई रहेकी, (१४८) कलारूपा- चौसट्ठीकलाकै स्वरूपमा विराजमान, (१४९) कौमुदी- चन्द्रमाको चन्द्रिकाका रूपमा रहेकी, (१५०) कालभैरवी- कालभैरवकी शक्तिका रूपमा रहेकी, (१५१) कमला- लक्ष्मीका रूपमा रहेकी वा ऐश्वर्यरूपा, (१५२) कामिनी- परब्रह्मकी अनादिशक्ति हुनाले सधैँ परब्रह्मरूपिणी भई रहन कामना गर्ने, (१५३) काली- पार्वतीका रूपमा लीला गर्नुहुने, (१५४) कुल्लुका- प्रत्येक देवताको मन्त्रभन्दा पहिले जपिने र देवताअनुसार भिन्दाभिन्दै स्वरूप भएको मन्त्रका रूपमा रहने विद्यासम्बन्धी दोष निवारण गर्ने मन्त्रात्मिका देवी, (१५५) कुसुमप्रिया- पुष्प मन पराउने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥५३-५४॥

(१५६) कलावती- सकल कलाकी मुहान, (१५७) करालास्या- विकराल मुख भएकी महाकालीका रूपमा विराजमान, (१५८) कैलासस्था- कैलासमा शङ्करप्रिया भई रहने देवी, (१५९) कलानिधि- सकल कलाकी खानी, (१६०) कामाख्या- कामाचलमा विराजमान कामेश्वरी भगवती, (१६१) कुलकान्ता- तन्त्रकुलकी सुन्दरी, (१६२) कामदा- भक्तको इच्छा पुऱ्याउने, (१६३) कामचारिणी- संसारमा स्वच्छन्द विचरण गर्ने जगदम्बा भगवती वाग्वतीलाई प्रणाम गर्दछु ॥५५॥

(१६४) कामधेनुः- भक्तले चिताएको कुरा पुऱ्याउने, (१६५) कृशाङ्गी- झिनो कम्मर भएकी सुन्दरीका रूपमा देखिने, (१६५) कालिन्दी- यमुना नदीका रूपमा प्रकट हुने, (१६६) कुञ्जरेश्वरी- ऐरावतमा सवार हुने इन्द्राणीका रूपमा रहेकी, (१६७) कान्तिकाया- सुषमासुन्दर शरीरले सुहाएकी, (१६८) काञ्चीस्था- शिवकाञ्ची र विष्णुकाञ्चीमा शिवा र रमाका रूपमा रहनुहुने, (१६९) अलकाकूटवाहिनी- यक्षहरूको राजधानी अलकानगरीमा रहेका पर्वतश्रृङ्गमा प्रवाहित हुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥५६॥

(१७०) कुलवती- तन्त्रशास्त्रमा प्रतिपादित कुलहरूकी स्वामिनी, (१७१) कुटिलाङ्गी- बाङ्गो गतिले बग्ने सरस्वती नदीका रूपमा रहेकी, (१७२) कोटराक्षी- महाकालीका रूपमा रहँदा रुखका टोड्का जस्ता आँखाले युक्त हुने, (१७३) कपालिनी- महाकालीकै रूपमा रहँदा नरमुण्ड धारण गर्ने, (१७४) कामेश्वरी- कामाचलमा सकल कामनाकी स्वामिनी कामाख्याका रूपमा रहने, (१७५) कङ्काली- महाकालीकै एक भेद अस्थिपञ्जर धारण गर्ने कलङ्की नामक देवीको स्वरूपमा रहेकी (१७६) कीर्तिदा- वाणीका साधकहरूलाई कीर्ति दिने, (१७७) कामसुन्दरी- कामदेवकी प्रिया रतिका रूपमा प्रकट हुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥५७॥

(१७८) कामार्ता- कामदेवपीडित वियोगिनी शिवाका रूपमा लीला गर्ने, (१७९) कामरूपा- इच्छानुसार स्वरूप धारण गर्ने, (१८०) करुणा- प्रत्येक व्यक्तिका हृदयमा दयाका रूपमा रहने, (१८१) कुलदेवता- तान्त्रिक कुलहरूकी उपास्या, (१८२) कुलिशाङ्गी- दुष्टदमन गर्न वज्रकठोर शरीर धारण गर्नुहुने, (१८३) कला- चौसट्ठी कलाका रूपमा व्यक्त हुने, (१८४) काष्ठा- पूर्वादि दश दिशाका रूपमा रहेकी, (१८५) कुमारी- प्रत्येक गृहस्थका घरमा कुमारीका रूपमा रहनुहुने, (१८६) कमलेक्षणा- दिव्यरूप धारण गर्दा कमलझैँ सुन्दर नयनले सुहाएकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥५८॥

कल्याणी काचिर्वता कान्तिः कालरात्री च कौशिकी। काम्या ह्यलकनन्दा च कुलधर्मप्रकाशिनी ॥५९॥
कलुषघ्नी कृपास्वच्छा कृष्णा कृष्णसमर्चिता। कान्तकल्लोललोलाढ्या कृपाकल्लोलशालिनी ॥६०॥
खगेश्वरी खरूपा च खगा खगेन्द्रवाहिनी। खवर्णा खड्गहस्ता च खेचरी खेटकायुधा ॥६१॥
खखोदरी खगेन्द्रेभा खमणिद्युतिशोभना। खरद्रंष्ट्रा खगास्या च खण्डपरशुवल्लभा ॥६२॥
गजास्याम्बा गुह्येशी गजेन्द्रदशनच्छविः। गजचर्मावृतजाया गजाननप्रसूतिका ॥६३॥
गौरी गोदावरी गङ्गा गन्धर्वगणसेविता। गणनीया गणाध्यक्षा गम्भीरनीरवाहिनी ॥६४॥

---

(१८७) कल्याणी- सबैको कल्याण गर्ने, (१८८) कार्चिता- ब्रह्माजीद्वारा पूजित भएकी, (१८९) कान्तिः - सम्पूर्ण जगत्मा सुषमा बनेर रहेकी, (१९०) कालरात्रिः- नवदुर्गामध्ये सातौँ दुर्गाका रूपमा रहेकी, (१९१) कौशिकी- कुशिक मुनिद्वारा आराधित जलदेवीका रूपमा रहेकी, (१९२) काम्या- सबैद्वारा कामना गरिने, (१९३) अलकनन्दा- भगवती पार्वतीको केशबाट पसिना बनेर पैदा भएकी बद्रीनाथमा प्रवाहित हुने नदीका रूपमा रहेकी, (१९४) कुलधर्मप्रकाशिनी- तान्त्रिक कुलहरूको कर्तव्य र नियम प्रकाशित गर्ने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥५९॥

(१९५) कलुषघ्नी- पापनाशिनी, (१९६) कृपास्वच्छा- कृपाभैँ निर्मल जल प्रवाहित गर्ने, (१९७) कृष्णा- नीलो जलले सुहाएकी कालीगण्डकीको स्वरूपमा रहेकी , (१९८) कृष्णसमर्चिता- द्वारकाबाट नेपाल आउनुभएका भगवान् कृष्णद्वारा पूजित, (१९९) कान्तकल्लोललोला- रमणीय तरङ्गहरूका कारण चञ्चल देखिने, (२००) आढ्या- सर्वगुणसम्पन्न, (२०१) कृपाकल्लोलशालिनी- कृपाका तरङ्गले सुहाएकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥६०॥

(२०२) खगेश्वरी- सूर्य, चन्द्र, तारा आदिकी स्वामिनी, (२०३) खरूपा- शून्यरूपा वा ब्रह्मरूपा, (२०४) खगा- आकाशमा सूर्य, चन्द्र आदिको रूप लिएर विचरण गर्ने, (२०५) खगेन्द्रवाहिनी- गरुडवाहिनी, वैष्णवी वा हंसवाहिनी, (२०६) खवर्णा- आकाशभैँ नीलो वर्ण भएकी, (२०७) खड्गहस्ता- दुर्गा वा चण्डीको रूप लिएर खड्गधारण गर्ने, (२०८) खेचरी- आकाशचारिणी, (२०९) खेटकायुधा- आयुधका रूपमा ढाल धारण गर्ने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥६१॥

(२१०) खखोदरी- आफ्नो उदरमा चैतन्यमय ब्रह्म र जगत् धारण गर्ने, (२११) खगेन्द्राभा- गरुडको आभाद्वारा आभासित, (२१२) खेमणिद्युतिशोभना- आकाशका मणि सूर्यको द्युतिसमान सुन्दर कान्ति भएकी, (२१३) खरद्रष्टा- महाकालीको रूप धारण गर्ने क्रममा डरलाग्दा दाह्रा धारण गर्ने, (२१४) खगास्या- सूर्यचन्द्रसमान ज्योतिर्मय एवं शीतल मुखमण्डल भएकी, (२१५) खण्डपरशुवल्लभा- भगवान् शिवकी प्यारी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥६२॥

(२१६) गजास्याम्बा- भगवान् गणेशकी जननी, (२१७) गुह्येश्वरी- गुह्यकालीका रूपमा प्रकट हुने, (२१८) गजेन्द्रदशनच्छविः- गजराज ऐरावतका दाँतको कान्तिभैँ उज्ज्वल कान्ति भएकी, (२१९) गजचर्म्मावृतजाया- हात्तीको छाला ओढ्ने भगवान् शिवकी पत्नी, (२२०) गजाननप्रसूतिका- हात्तीको जस्तो मुख भएका गणेशकी आमा भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥६३॥

(२२१) गौरी- हिमालयकी गोरी छोरी भएका कारण गौरी नामले प्रसिद्ध भएकी, (२२२) गोदावरी- नेपालको गोदावरीतीर्थकी अधिष्ठात्री अथवा मध्यप्रदेशको नासिक नजिकै ब्रह्मगिरि पहाडबाट बग्ने सात धारा भएकी नदीकी अधिष्ठात्री देवीका रूपमा रहेकी, (२२३) गङ्गा- हिमालयकी उनै जेठी छोरी (जसका सात भेदमध्ये एउटी गण्डकी पनि हुन्) गङ्गाका रूपमा रहेकी, (२२४) गन्धर्वगणसेविता- गन्धर्वहरूद्वारा सेवा गरिएकी, (२२५) गणनीया- उत्तम नदीहरूमध्ये गन्नलायक, (२२६) गणाध्यक्षा- नदीसमूहकी स्वामिनी, (२२७) गम्भीरनीरवाहिनी- अगाध जल लिएर बगेकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥६४॥

गणमाता च गान्धारी गगनमणिभूषणा। गोमती गगनेशानी गिरिजा गिरिशप्रिया ॥६५॥

गङ्गार्चिता च गायत्री गिरिस्था गिरिसंभवा। गण्डकी गरुडस्था च गोकर्णार्चा च गौतमी ॥६६॥

घनभक्तिप्रिया घोरा घनामरप्रसेविता। घृताचीसेविता घोरा घोराग्रा घोरवल्लभा ॥६७॥

घनाघनौघघोरास्या घनपापविनाशिनी। घनस्वना घना घोरा घोरतरा घनच्छविः ॥६८॥

घेश्वरी घोरघोषा च घोरकिल्विषघातिनी। चञ्चला चारुवाहा च चण्डेश्वरी च चित्तवित् ॥६९॥

प्रचण्डा चण्डरूपा च चामुण्डा चतुरानना। चपला चण्डिका चण्डी षट्चक्रान्तर्निवासिनी ॥७०॥

चारुचारा च चार्व्वङ्गी चतुरा चारुहासिनी। चतुःषष्टिकला चित्रा चित्राङ्गी चारुलोचना ॥७१॥

---

(२२८) गणमाता- गणेशादि गणकी आमा, (२२९) गान्धारी- पतिव्रताशिरोमणि कौरवमाता गान्धारी अथवा कुण्डलिनी योगमा बायाँ आँखाको नाडी मानिएकी, (२३०) गगनमणिभूषणा- सूर्यनारायणलाई आभूषणका रूपमा प्रयोग गर्नुहुने, (२३१) गोमती- गोदावरीका रूपमा रहेकी, (२३२) गगनेशानी- आकाशतत्त्वकी स्वामिनी, (२३३) गिरिजा- हिमालयपर्वतकी छोरी, (२३४) गिरिशप्रिया- भगवान् कैलासेश्वरकी प्रिया भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥६५॥

(२३५) गङ्गार्चिता- गङ्गा नदीद्वारा वागीश्वरीका रूपमा सम्मानित भएकी, (२३६) गायत्री- वागीश्वरी भई वेदमाता गायत्रीका रूपमा प्रकट हुने, (२३७) गिरिस्था- वाग्वतीप्रभव पर्वतमा वास गर्ने, (२३८) गिरिसम्भवा- वाग्वतीप्रभव पर्वतबाट पैदा भएर बगेकी, (२३९) गण्डकी- गण्ड ऋषिद्वारा सेवा गरिएकी, (२४०) गरुडस्था- भगवान् विष्णुका साथ लक्ष्मी बनेर गरुडमा सवार हुने, (२४१) गोकर्णार्चा- गोकर्ण क्षेत्रमा वाग्वतीमूर्तिका रूपमा पूजित भएकी, (२४२) गौतमी- गौतम ऋषिको आश्रममा प्रकट भएकी वा गोदावरीका रूपमा रहेकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥६६॥

(२४३) घनभक्तिप्रिया- गहन भक्ति रुचाउने, (२४४) घोरा- पापीहरूका लागि भयङ्कर, (२४५) घनामरप्रसेविता- वाग्वतीप्रभव पर्वतमा एकत्रित देवगणद्वारा सेवित, (२४६) घृताचीसेविता- घृताची अप्सराद्वारा सरस्वतीका रूपमा सेवित, (२४७) घोरा- वाग्वतीप्रभव पर्वतबाट डरलाग्दो जलराशिका रूपमा बगिरहेकी, (२४८) घोराग्रा- भयङ्कर मुख भएकी, (२४९) अघोरवल्लभा- भगवान् शिवकी प्रिया भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥६७॥

(२५०) घनघनौघघोरास्या- अत्यन्त सघन बादलको समूहझैं डरलाग्दो मुखमण्डल भएकी, (२५१) घनपापविनाशिनी- भयङ्कर पाप नाश गर्ने, (२५२) घनस्वना- गम्भीर स्वर भएकी, (२५३) घना- अगाधरूप भएकी, (२५४) घोरा- घोरस्वरूप भगवान् शिवकी प्रिया महाकालीका रूपमा रहनुभएकी, (२५५) घोरतरा- अत्यन्त भयङ्कर, (२५६) घनच्छविः- गाढा कान्ति भएकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥६८॥

(२५७) ङेश्वरी- भैरवहरूकी स्वामिनी, (२५८) घोरघोषा- भयङ्कर आवाज गर्ने, (२५९) घोरकिल्बिषनाशिनी- भयङ्कर पाप नाश गर्ने, (२६०) चञ्चला- चञ्चल चञ्चल तरङ्ग भएकी, (२६१) चारुवाहा- सुन्दर गतिका साथ प्रवाहित हुने, (२६२) चण्डेश्वरी- चण्डेश्वर शिवकी प्रिया, (२६३) चित्तवित्- मानिसहरूको चित्तको रहस्य जान्ने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥६९॥

(२६४) प्रचण्डा- प्रचण्ड स्वभाव भएकी, (२६५) चण्डरूपा- डरलाग्दो रूप भएकी, (२६६) चामुण्डा- चण्ड-मुण्डको संहार गर्ने दुर्गाका रूपमा रहेकी, (२६७) चतुरानना- चार मुखले सुहाएकी ब्रह्माजीका रूपमा रहेकी, (२६८) चपला- लक्ष्मीरूपिणी, (२६९) चण्डिका- शत्रुमाथि प्रचण्ड रोष गर्ने दुर्गाका रूपमा रहेकी, (२७०) चण्डी- क्रोधमूर्ति दुर्गाका रूपमा रहनुहुने, (२७१) षट्चक्रान्तर्निवासिनी- मूलाधार आदि छवटा चक्रभित्र शक्तिरूपले निवास गर्ने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥७०॥

(२७२) चारुचरा- मनोहर गति भएकी, (२७३) चार्वङ्गी- सुन्दर अङ्ग-प्रत्यङ्गले सुहाएकी, (२७४) चतुरा- सृष्टि पालन र संहारमा कुशल भुवनेश्वरीस्वरूपकी, (२७५) चारुहासिनी- सम्मोहक मुस्कान भएकी, (२७६) चतुःषष्टिकला- चौसट्ठीकलाका रूपमा रहेकी, (२७७) चित्रा- विविधरूप रङ्ग र लीला भएकी, (२७८) चित्राङ्गी- विचित्र रूप रङ्ग भएकी, (२७९) चारुलोचना- सुन्दर नयन भएकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥७१॥

चारुदेहा चतुर्बाहुश्चित्रभानुतनुप्रभा । चन्द्रभा चन्द्रभागा च चैतन्या चक्रधारिणी ॥७२॥
छन्दोरूपा छवर्णाभा प्रोच्छाया छन्नविग्रहा । छायासञ्छादितालोका छकारा छिन्नविग्रहा ॥७३॥
छत्रसञ्छादिता स्वच्छा लाञ्छनोर्मिमयच्छविः । छन्दोमयी श्रुतिश्छन्दा छिन्नात्मा छिन्नसंशया ॥७४॥
जगदानन्दिनी ज्वाला जाम्बवत्यर्चिता जिता । जगत्प्रिया जितक्रोधा जगद्धीरा जितेन्द्रिया ॥७५॥
जाह्नवी जानकी जप्या जननी जननन्दिनी । जगद्धात्री जगन्मान्या जन्तुजन्मा जराश्रिता ॥७६॥
जगद्वपुर्ज्जगज्जीवा जातवेदापराजिता । जयमूर्त्तिज्जगन्माता जनस्वान्तर्निवासिनी ॥७७॥

---

(२८१)चारुदेहा–सुन्दरशरीरभएकी,(२८२)चतुर्बाहुः–चारभुजालेसुहाएकी,(२८३)चित्रभानुतनुप्रभा–अग्निको ज्वालाझैँ तेजले धपक्क बलेकी, (२८४) चन्द्रभा– चन्द्रमाको कान्तिका रूपमा रहेकी (२८५) चन्द्रभागा– चन्द्रमामा गदा प्रहार गर्दा पैदा भएकी नदीका रूपमा रहेकी, (२८६) चैतन्या– चैतन्यशक्तिका रूपमा रहेकी, (२८७) चक्रधारिणी– वैष्णवी बनेर चक्र धारण गर्ने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥७२॥

(२८८) छन्दोरूपा– वेदका रूपमा रहेकी, (२८९) अच्छवर्णाभा– सुन्दर वर्णको आभाले सम्पन्न, (२९०) प्रोच्छायाछन्नविग्रहा– छायादार रुखहरूका ठूय ठूला छायाले ढाकिएकी, (२९१) छायासञ्छादितालोका– आफ्ना तटवर्ती रूखका छायाले प्रकाश छेकिरहेकी (२९२) छकाराच्छन्नविग्रहा– जसको शरीरमा ब्रह्मा, विष्णु र महेश व्याप्त हुनुहुन्छ त्यस्ती ब्रह्मविष्णुमहेशमयी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥७३॥

(२९३) छत्रसंछादिता– छायादार वृक्षरूप छाता ओढेकी अथवा छायादार वृक्षरूप छाता ओढाएर सरस्वतीका रूपमा पूजा गरिएकी, (२९४) स्वच्छा– निर्मल स्वरूप भएकी, (२९५) लाञ्छनोर्मिमयच्छविः– वाग्वती अर्थात् सरस्वती भन्ने नामको प्रभावको प्रभावकारी तरङ्गद्वारा नै दर्शन गर्न नपाएका भक्तहरूको मानस बिम्बमा दूधजस्तो सेतो कान्ति भएकी देवीका रूपमा प्रतिबिम्बित हुने, (२९६) छन्दोमयी– वेदलाई विग्रह बनाउनुहुने अर्थात् वेदमूर्ति, (२९७) श्रुतिच्छन्दा– वेदलाई अड्याउने अनुष्टुप, त्रिष्टुभ् आदि छन्दका रूपमा रहेकी, (२९८) इच्छात्मा– मानवमनमा आकाङ्क्षाका रूपमा रही सबैलाई आशावादी बनाउने, (२९९) छिन्नसंशया– उपासनाजनित दिव्य एवं शास्त्रवाणी बनेर सबैका सन्देश मेटाउने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥७४॥

(३००) जगदानन्दिनी– सरस्वती एवं नदी दुबै स्वरूपद्वारा जगत्लाई आनन्द प्रदान गर्नुहुने, (३०१) ज्वाला– अज्ञान, पाप र दुःख नाश गर्ने ज्योतिका रूपमा रहेकी, (३०२) जाम्बवत्यर्चिता– श्रीकृष्णकी प्रियतमा जाम्बवतीद्वारा पूजा गरिएकी, (३०३) अजिता– कसैले पनि पराजित गर्न नसक्ने प्रचण्डतेजोमय ज्ञानका रूपमा रहेकी, (३०४) जगत्प्रिया– भौतिक दैविक र आत्मिक ज्ञानका रूपमा सबैले मन पराएकी, (३०५) जितक्रोधा– ज्ञानकी पुञ्ज हुनाले क्रोध काम आदि दुर्गुणलाई परास्त गर्ने, (३०६) जगद्धीरा– जगत्को आरोह एवं अवरोह गरी दुबै स्थितिमा धैर्यपूर्वक ज्ञानदीप बालिरहने, (३०७) जितेन्द्रिया– भोगमा स्वाभाविकरूपमा प्रवृत्त हुने इन्द्रियमाथि विजय गर्ने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥७५॥

(३०८) जाह्नवी– भगवती गङ्गाकै एक धारा मानिएकी, (३०९) जानकी– सीताजीका रूपमा प्रकट भएकी, (३१०) जप्या– विभिन्न सारस्वत मन्त्रद्वारा जप गरिने देवी, (३११) जननी– संसारकी आमा अथवा विद्यारूपमा रही सन्तान वा विद्यार्थीहरूको गुण, स्वभाव, कर्ममा परिवर्तन ल्याएर नयाँ व्यक्तित्व जन्माउने आमा बनेकी, (३१२) जननन्दिनी– सरस्वती अथवा नदी दुबै रूपमा सबैलाई आनन्द दिने, (३१३) जगद्धात्री– जगत्को पालन गर्ने, (३१४) जगन्मान्या– आमा सरस्वती र पुण्यनदी वाग्वतीका रूपमा सबैद्वारा माननीया, (३१५) जन्तुजन्मान्तराश्रिता– प्रत्येक प्राणीसँग जन्म र जन्मान्तरमा बुद्धिको र विद्यासंस्कारका रूपमा सँगै रहने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥७६॥

(३१६) जगद्वपुः– ब्रह्माण्डलाई नै स्थूल शरीरका रूपमा धारण गर्ने, (३१७) जगज्जीवा– जगत्का जीवमा रही तिनीहरूको प्राणस्पन्दन गराउने, (३१८) जातवेदाः– अग्नि र स्वर्णका रूपमा तैजसी मूर्ति भएर रहने, (३१९) अपराजिता– विजया भगवती बनेर रहने, (३२०) जयमूर्तिः– विजयश्रीका रूपमा रहने, (३२१) जगन्माता– जगदम्बा, (३२२) जनस्वान्तर्निवासिनी– प्राणीहरूको हृदयमा रहने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥७७॥

जाम्बूनदप्रवाहा च जया च विजया जया। जगज्जीवमयी माता जयन्ती जगदुच्छ्रिता ॥७८॥
जीवेश्वरी जनैश्वर्या जीवेशजनकारिणी। झङ्केश्वरी झकारात्मा झङ्कारस्वनवाहिनी ॥७९॥
झर्झरानिपतन्ती च झङ्केशार्द्धाङ्गहारिणी। झषावतारसुप्रीता झषवर्गप्रसेविता ॥८०॥
झर्झररवसङ्क्षिप्ता झकाररूपतोषिता। अट्टाट्टहासिनी क्रोधात्कोटिकोटितरङ्गिणी ॥८१॥
तटिनी करहाटाद्या चाटवीक्षितिगामिनी। हिमकूटतटोद्भूता कूटकटकवाहिनी ॥८२॥
शङ्खताटङ्करम्यास्या निधनोद्यतटङ्किनी। पीठेश्वरी च पीठार्या पीवराम्बुप्रवाहिनी ॥८३॥
डाकिनी डमरुहस्ता डकारेशा डनादिनी। डम्भहन्त्री च भेरुण्डा डामरा डण्डतर्जनी ॥८४॥

---

(३२३) जाम्बूनदप्रवाहा- स्वर्णमय प्रवाह भएकी अथवा स्वर्णिम ज्ञानधारा प्रवाहित गर्ने, (३२४) जया- पार्वतीकी सखी जयाका रूपमा रहेकी, (३२५) विजया- पार्वतीकी सखी विजयाका रूपमा रहेकी, (३२६) अजया- शत्रुबाट पराजित नहुने, (३२७) जगज्जीवमयी- सकल संसारका जीवहरूका रूपमा रहेकी, (३२८) माता- स्नेहसिक्त जननीका रूपमा रहेकी, (३२९) जयन्ती- जयन्तीनामक शक्तिका रूपमा प्रकट हुने, (३३०) जगदुच्छ्रिता- जागतिक वासनाबाट धेरै माथि उठेकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥७८॥

(३३१) जीवेश्वरी- जीवहरूकी स्वामिनी, (३३२) जनैश्वर्या- भक्तहरूको लागि ऐश्वर्य बनेर प्रकट हुने, (३३३) जीवेशादेशकारिणी- पूर्ण परब्रह्मको आदेश पालन गर्ने, (३३४) झङ्केश्वरी- शिवप्रिया पार्वती, (३३५) झकारात्मा- बृहस्पतिका रूपमा रहेकी, (३३६) झङ्कारस्वनवाहिनी- झङ्कार स्वरका साथ प्रवाहित हुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥७९॥

(३३७) झर्झरानिपतन्ती- झर्झर स्वरका साथ पहाडबाट छहराका रूपमा मैदानमा हामफाल्ने, (३३८) झङ्केशार्द्धाङ्गहारिणी- भगवान् शिवको बायाँ काखमा विराजमान हुने, (३३९) झषावतारसुप्रीता- मत्स्यावतार लिनुहुने भगवान् विष्णुलाई मन पराउनुहुने, (३४०) झषवर्गप्रसेविता- कामदेव रउनका सहयोगीहरूद्वारा सेवित भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥८०॥

(३४१) झर्झररवसंक्षिप्ता- झर्झर ध्वनि गर्दै पहाडबाट फ्याँकिएकी, (३४२) झकाररूपतोषिता- भगवान् शिवको स्वरूप सौन्दर्यले तुष्ट भएकी, (३४३) क्रोधात् अट्टाट्टहासिनी- दुर्जनप्रति क्रोध हुँदा अट्टहास गर्ने शाङ्करी, (३४४) कोटिकोटितरङ्गिणी- करोडौं तरङ्ग भएकी अथवा करोडौं ज्ञानका तरङ्गले युक्त भएकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥८१॥

(३४५) करहाटाद्यातटिनी- स्वर्णमयी नदी, (३४६) अटवीक्षितिगामिनी- वन्यभूमि हुँदै समुद्र पुग्ने लक्ष्यले प्रवाहित हुने, (३४७) हिमकूटतटोद्भूता- हिमालयको चुचुराको समीपमा पैदा भएकी, (३४८) कूटकटकवाहिनी- हिमाली चुचुराको गुफाबाट बग्ने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥८२॥

(३४९) शङ्खताटङ्करम्यास्या- शङ्ख र कर्णभूषणझैं रमणीय र उज्ज्वल अनुहार भएकी, (३५०) निधनोद्यतटङ्किनी- आत्मघात गर्न तयार भएकालाई दण्ड दिने, (३५१) पीठेश्वरी- गुह्यकाली पीठकी स्वामिनी, (३५२) पीठार्या- पीठमा विराजमान भगवती पार्वती, (३५३) पीवराम्बुप्रवाहिनी- स्थूल जलधारा प्रवाहित गर्ने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥८३॥

(३५४) डाकिनी- मूलाधारमा रहेकी देवी, (३५५) डमरुहस्ता- हातमा डमरु लिने, (३५६) डकारेशा- शिवजीकी हृदयेश्वरी, (३५७) डनादिनी- ढोल वा मृदङ्गको स्वरजस्तो स्वर प्रकट गर्ने, (३५८) डम्भहन्त्री- दम्भ, अहङ्कार एवं अज्ञान नाश गर्ने, (३५९) भेरुण्डा- श्रीविद्याका रूपमा रहेकी, (३६०) डामरा- शिवनिर्मित डामरतन्त्रकी स्वामिनी, (३६१) डण्डवर्जनी- भक्तले गल्ती गर्दा दण्डको सट्टा प्रेम दिएर सुधार गर्नुहुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥८४॥

ढरूपा ढस्वरा ढात्मा भङ्गाढ्या ढण्ढकारिणी। ढक्कावाद्यस्वना वीचीदृढाधारा दृढारवा ॥८५॥
प्रणवेशी प्रणम्यार्य्या नम्या प्रणवसम्भवा। तरिङ्गिणी तरङ्गाढ्या तन्त्री तरलगामिनी ॥८६॥
तामसी च तमोरूपा तमोगुणा तमःपरा। तीरवती त्रिरूपा च तुष्टिस्तीव्राद्रिहा त्रयी ॥८७॥
तीव्रगा तीव्रभङ्गी च तीव्रतोया तपोमयी। दुस्तारा दुस्तरत्रात्री तारेशीताररूपिणी ॥८८॥
तारिणीताररूपा च तरलतरतारिणी। तपोनिष्ठा त्रिमात्रा च तपस्विनी त्रिलोचना ॥८९॥
त्रिदिवस्था त्रिधारा च तारेश्वरी त्रिविक्रमा। त्रिवर्गगामिनी त्रिस्था तत्त्वा त्रिपुरवासिनी ॥९०॥
त्रिलोकात्मा त्रिलोकस्था त्रैलोक्यतीर्थनन्दिनी। ताटङ्किनी च तारस्था तारा त्रिशूलधारिणी ॥९१॥

---

(३६२) ढरूपा- कुण्डलिनीका रूपमा रहेकी, (३६३) ढस्वरा- ठूलो आवाज उच्चारण गर्ने, (३६४) ढात्मा- ध्वनिका रूपमा फैलिएकी, (३६५) भङ्गाढ्या- अनेक भङ्गालो भएकी, (३६६) ढण्ढकारिणी- वेगले प्रवाहित भई ढं ढं शब्द गर्ने, (३६७) ढक्कावाद्यस्वना- डमरुवाजाको जस्तो स्वर भएकी, (३६८) वीचीदृढधारा- मोटमोटा तरङ्गका प्रबल एवं स्थिर धारा भएकी, (३६९) दृढारवा- धीर गम्भीर स्वर भएकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥८५॥

(३७०) प्रणवेशी- ॐकारकी स्वामिनी, (३७१) प्रणम्या- सबैद्वारा वन्दनीया, (३७२) आर्या- उत्तम गुणवती, (३७३) नम्या- नमस्कार गर्न योग्य भएकी, (३७४) प्रणवसम्भवा- ॐकारबाट पैदा भएकी, (३७५) तरङ्गिणी- तरङ्गले परिपूर्ण, (३७६) तरङ्गाढ्या- तरङ्गले सम्पन्न बनेकी, (३७७) तन्त्रीतरलगामिनी- वीणानादझैं मधुर स्वरका साथ चञ्चल गतिले प्रवाहित हुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥८६॥

(३७८) तामसी- तमोगुणमयी महाकाली, (३७९) तमोरूपा- अन्धकारझैं नीलो रूप भएकी, (३८०) तमोगुणा- तमोगुणकी स्वामिनी, (३८१) तमःपरा- तमोगुणभन्दा माथि रहेकी, (३८२) तीरवती- पवित्र तटले सुहाएकी, (३८३) त्रिरूपा- महाकाली, महालक्ष्मी र महासरस्वतीका रूपमा रहेकी, (३८४) तुष्टिः- सन्तोषका रूपमा रहेकी, (३८५) तीव्रा- अति तीव्र वेग भएकी, (३८६) अद्रिहा- जलवेगद्वारा पर्वत फोर्न सक्ने, (३८७) त्रयी- ऋग्, यजु र सामवेदका रूपमा रहेकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥८७॥

(३८८) तीव्रगा- तीव्रगतिले बग्ने, (३८९) तीव्रभङ्गी- अत्यन्त तीव्र गतिमय भङ्गालाले युक्त भएकी, (३९०) तीव्रतोया- तीव्र गतिले बग्ने जल भएकी, (३९१) तपोमयी- तीरमा तपस्या गर्ने तपस्वीका तपले पवित्र भएकी, (३९२) दुस्तारा- तर्न कठिन हुने, (३९३) दुस्तरत्रात्री- कठोर दुःखबाट रक्षा गर्नुहुने, (३९४) तारेशी- ताराहरूकी स्वामिनी, (३९५) ताररूपिणी- ॐकारमयी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥८८॥

(३९६) तारिणी- भक्तहरूलाई संसारबाट पार लगाउने, (३९७) ताररूपा- ॐकारका रूपमा रहेकी, (३९८) तरलतरवारिणी- चञ्चल चञ्चल जल भएकी, (३९९) तपोनिष्ठा- तपस्वीद्वारा सेवित, (४००) त्रिमात्रा- अ.उ.म.द्वारा निपन्न हुने ॐकारका रूपमा रहेकी, (४०१) तपस्विनी- पहाडबाट हाम्फाल्दै कष्टसाथ आफ्ना प्रियतम समुद्रमा जान हिँडेकी तपस्यातत्परा वियोगिनी, (४०२) त्रिलोचना- तीन नयन धारण गर्ने शिवको रूप लिने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥८९॥

(४०३) त्रिदिवस्था- स्वर्गङ्गाका रूपमा रहेकी, (४०४) त्रिधारा- त्रिपथगा नामले प्रसिद्ध गङ्गाको रूप लिएकी, (४०५) तारेश्वरी- चन्द्रमाकी स्वामिनी, (४०६) त्रिविक्रमा- स्वर्ग, मर्त्य र पातालमा पराक्रम देखाउने गङ्गा वा वामन अवतारकी शक्तिका रूपमा रहेकी, (४०७) त्रिवर्गगामिनी- धर्म, अर्थ र कामनामक तीन पुरुषार्थ प्रदान गर्ने, (४०८) त्रिस्था- तीनै लोकमा विराजमान भएकी, (४०९) तत्त्वा- परमतत्त्व ब्रह्मका रूपमा रहेकी, (४१०) त्रिपुरवासिनी- त्रिपुरमा शाङ्करी शक्तिका रूपमा विराजमान भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥९०॥

(४११) त्रिलोकात्मा- स्वर्ग, मर्त्य र पाताल लोकहरूकी आत्मा, (४१२) त्रिलोकस्था- तीनै लोकमा विराजमान, (४१३) त्रैलोक्यतीर्थनन्दिनी- त्रिलोकीका तीर्थहरूलाई आफ्नो उपस्थितिले आनन्दित गराउने, (४१४) ताटङ्किनी- कर्णालङ्कारले सुहाएकी, (४१५) तारस्था- ॐकारभित्र अर्धमात्राका रूपमा रहेकी, (४१६) तारा- नीलसरस्वतीका रूपमा प्रसिद्ध भगवती, (४१७) त्रिशूलधारिणी- माहेश्वरी वा शाङ्करी बनेर त्रिशूल धारण गर्ने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥९१॥

त्रिमूर्तिस्तरणी तापा त्र्यक्षरा त्रिविधाङ्गिनी। तीर्थवन्द्या लसत्तीर्था तीर्थराज्ञी च तीर्थदा ॥९२॥
तीर्थाद्या तीर्थज्येष्ठा च तीर्थेशी तीर्थवाहिनी। तार्क्ष्यस्था तार्क्ष्यवन्द्या च तार्क्ष्यार्य्या तार्क्ष्यवाहिनी ॥९३॥
स्थानस्था स्थण्डिला स्थिरा स्थाण्वीश्वरी स्थलश्रिता।
मथुरा मथुरास्थात्री स्थानीयस्था स्थला स्थिरा ॥९४॥
ज्येष्ठा च स्थविरा मन्था मैथिली प्रमथाधिपा। दुष्कृतघ्नी स्पृहादोग्ध्री देवमाता दधिप्रभा ॥९५॥
देवता देवमूर्तिश्च देवदेवप्रियोत्तमा। देवदूती च दीप्तास्या देवकी दैत्यनाशिनी ॥९६॥
द्वीपिचर्मावृता दाक्षी दक्षयज्ञविनाशिनी। दारिद्र्यनाशिनी दान्ता दाक्षायणी च दुर्गहा ॥९७॥

---

(४१८) त्रिमूर्तिः– महाकाली, महालक्ष्मी एवं महासरस्वतीको मूर्ति धारण गर्नुहुने, (४१९) तरणी– गङ्गा, वाग्वती आदि नदीका रूपमा रहने, (४२०) तापा– पापीहरूलाई ताप दिने, (४२१) त्र्यक्षरा– तीन अक्षरको "ह्रीं" बीजका रूपमा रहेकी, (४२२) त्रिविधाङ्गिनी– ऐं, ह्रीं, क्लीं रूप तीन बीजाक्षरलाई अङ्गका रूपमा धारण गर्नुहुने, (४२३) तीर्थवन्द्या– तीर्थहरूद्वारा वन्दनीया, (४२४) लसत्तीर्था– तीर्थहरूलाई शोभामय तुल्याउनुहुने, (४२५) तीर्थराज्ञी– तीर्थहरूकी ईश्वरी, (४२६) तीर्थदा– उत्तम गुरु, सज्जन, स्थान आदि तीर्थहरू प्रदान गर्ने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥९२॥

(४२७) तीर्थाद्या– संसारमा प्रथम तीर्थ मानिएकी, (४२८) तीर्थज्येष्ठा– सबै तीर्थमा ज्येष्ठतीर्थ मानिएकी, (४२९) तीर्थार्या– तीर्थहरूकी ईश्वरी, (४३०) तीर्थवाहिनी– तीर्थहरूमा प्रवाहित हुने, (४३१) तार्क्ष्यस्था– वैष्णवीको रूप लिँदा गरुडमा सवार हुने, (४३२) तार्क्ष्यवन्द्या– गरुडद्वारा वन्दनीया, (४३३) तार्क्ष्यार्या– गरुडकी सर्वेश्वरी, (४३४) तार्क्ष्यवाहिनी– गरुडलाई वाहन बनाई विचरण गर्ने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥९३॥

(४३५) स्थानस्था– भगवान् पशुपतिको दिव्यधाम जस्तो उचित स्थानमा रहेकी, (४३६) स्थण्डिला– ठाउँ ठाउँमा बालुवाको वेदीले सुहाएकी, (४३७) स्थिरा– सृष्टिकालदेखि गङ्गाभन्दा पनि दीर्घकालसम्म स्थिर रहने, (४३८) स्थाण्वीश्वरी– भगवान् स्थाणु (शिव) की हृदयेश्वरी, (४३९) स्थलाश्रिता– पाशुपत क्षेत्रजस्तो पवित्र भूमिको आश्रय लिएकी, (४४०) मथुरा– वाङ्मयद्वारा ब्रह्मज्ञान र भक्तिभाव फैलाएर जनताको अज्ञान मेट्नुहुने ऐरावती, (४४१) मथुरास्थात्री– अज्ञानको मन्थन गर्ने कार्यमा संलग्न हुने, (४४२) स्थानीयस्था– ८०० गाउँद्वारा बनेको काठमाडौं उपत्यकाजस्तो दुर्गभित्र विराजमान, (४४३) स्थलस्थिरा– पाशुपत क्षेत्रजस्तो पवित्र स्थलमा स्थिररूपमा प्रवाहित हुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥९४॥

(४४४) ज्येष्ठा– सबैभन्दा जेठी नदीका रूपमा रहेकी, (४४५) स्थविरा– सर्वाधिक आयु प्रमाण भएकी, (४४६) मन्था– अज्ञानको मथन गरी ज्ञानप्रकाश फैलाउने, (४४७) मैथिली– भगवती सीताका रूपमा प्रकट भएकी, (४४८) प्रमथाधिपा– प्रमथगणकी स्वामिनी, (४४९) दुष्कृतघ्नी– पापनाशिनी, (४५०) स्पृहादोग्ध्री– भक्तहरूको इच्छाअनुसार फल दोहन गर्नुहुने, (४५१) देवमाता– देवताहरूकी आमा अदितिका रूपमा रहेकी, (४५२) दधिप्रभा– दहीभैँ उज्ज्वल शुक्ला सरस्वती भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥९५॥

(४५३) देवता– देवताहरूको सामूहिक स्वरूप भएर रहेकी, (४५४) देवमूर्तिः– देवस्वरूप भई विराजमान, (४५५) देवदेवप्रियोत्तमा– देवाधिदेव महादेवकी प्रियाहरूमा उत्तम, (४५६) देवदूती– देवताहरूकी संदेशवाहिका भई वाग्वतीका रूपमा प्रवाहित, (४५७) दीप्तास्या– चहकिलो अनुहारले सुहाएकी, (४५८) देवकी– देवताहरूको पूज्या, कृष्णमाताका रूपमा अवतीर्ण, (४५९) दैत्यनाशिनी– दुर्गा बनेर दैत्यहरूको नाश गर्ने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥९६॥

(४६०) द्वीपिचर्म्मावृता– माहेश्वरी भई शरीरमा बाघको छाला ओढ्नुहुने, (४६१) दाक्ष्या– दक्षनन्दिनी सतीका रूपमा पैदा भएकी, (४६२) दक्षयज्ञप्रमाथिनी– दक्षयज्ञको विध्वंस गर्नुहुने, (४६३) दारिद्र्यनाशिनी– भक्तहरूको दरिद्रता नाश गर्नुहुने, (४६४) दान्ता– इन्द्रिय संयमकी आदर्शमूर्ति, (४६५) दाक्षायणी– दक्षकन्याका रूपमा पैदा भएकी, (४६६) दुर्गहा– दुर्गनामक दानवको वध गर्नुहुने दुर्गाका रूपमा रहेकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥९७॥

दावाग्निदलना दक्षा दिग्वस्त्रा द्वादशानना। दशभुजा च दाक्षिण्या दण्डिनी दण्डवत्प्रिया ॥९८॥
दुरितघ्नी दया दुर्गा दुराधर्षा दिगम्बरी। दाहप्रशमनी दीप्ता दुराराध्या च दारुणा ॥९९॥
अष्टादशभुजा चण्डा द्विपत्रवासिनी दया। दक्षकन्या द्रवा दिव्या दिव्यरूपा दरीस्तवा ॥१००॥
दिव्यार्चिता च दिव्याङ्गी देवसैन्या सुदीप्तिका। दायिनी द्रव्यरूपा च दानवघ्नी दयाकरा ॥१०१॥
दुर्गरूपा दुराराध्या दुर्जया दुरतिक्रमा। देवेश्वरी दयाशीला दिव्यमोक्षप्रदायिनी ॥१०२॥
धीरा धीरप्रवाहा च धाराप्रवाहिनी सुधा। धरित्री धारिणी धात्री धारणीधरवाहिनी ॥१०३॥

---

(४६७) दावाग्निदलना– कृष्णका रूपमा पैदा भई दावाग्निलाई समाप्त पार्नुहुने, (४६८) दक्षा– प्रकृतिरूपमा सकल कार्यसम्पादनमा चतुरा, (४६९) दिग्वस्त्रा– दिगम्बर शिवकी प्रियाका रूपमा दिगम्बराको अभिनय गर्नुहुने, (४७०) द्वादशानना– सूर्यका रूपमा १२ स्वरूप लिएर १२ मुखले सुहाएकी, (४७१) दशभुजा– दश बाहु भएकी दुर्गा, (४७२) दाक्षिण्या– उदारताकी प्रतिमूर्ति, (४७३) दण्डिनी– दण्डधारिणी, (४७४) दण्डवत्प्रिया– धर्मराजकी गृहिणीका रूपमा प्रकट भएकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥९८॥

(४७५) दुरितघ्नी– पाप नाश गर्नुहुने, (४७६) दया– प्राणीहरूको हृदयमा दया बनेर रहेकी, (४७७) दुर्गा– दुर्गा भगवतीका रूपमा रहेकी, (४७८) दुराधर्षा– कसैद्वारा पनि अजेय भई विराजमान हुनुभएकी, (४७९) दिगम्बरी– दिशालाई नै वस्त्रका रूपमा धारण गर्नुहुने, (४८०) दाहप्रशमनी– मानिसका मानसिक र शारीरिक ताप नाश गर्नुहुने, (४८१) दीप्ता– आत्माको चहकद्वारा प्रकाशित भएकी, (४८२) दुराराध्या– दुःखले कठोर तपस्या गरी आराधना गर्न सकिनुहुने, (४८३) दारुणा– पापीहरूका लागि कठोर बन्नुहुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥९९॥

(४८४) अष्टादशभुजा– अठार भुजा धारण गर्ने महाकालीका रूपमा रहनुहुने, (४८५) चण्डा– प्रचण्ड क्रोधकी मूर्ति बनेर दैत्यवंशको नाश गर्नुहुने, (४८६) द्विपत्रवासिनी– दुई पाते कमलमा विराजमान हुनुहुने, (४८७) दया– दयाका रूपमा मानवहृदयमा निवास गर्नुहुने, (४८८) दक्षकन्या– दक्षकी छोरी सती बनेर पैदा भएकी, (४८९) द्रवा– रसरूप लिएर वाग्वती बनी बग्नुहुने, (४९०) दिव्या– अलौकिक स्वरूप भएकी, (४९१) दिव्यरूपा– सरस्वतीको रूप लिँदा ज्यादै अनुपम मूर्ति बनेर देखिनुहुने, (४९२) दरीस्तवा– गुफाहरूमा गई ऋषिमुनिहरूद्वारा स्तुति गरिएकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१००॥

(४९३) दिव्यार्चिता– दिव्यलोकका देवीदेवताहरूद्वारा पूजा गरिएकी, (४९४) दिव्याङ्गी– अलौकिक आभासम्पन्न अङ्गप्रत्यङ्गले सुहाएकी, (४९५) देवसैन्या– देवताहरूलाई सैन्य बनाई दानवहरूसँग युद्ध गर्नुहुने, (४९६) सुदीप्तिका– अत्यन्त आह्लादक कान्ति भएकी, (४९७) दामिनी– विद्युत्तरङ्गका रूपमा संसारमा फैलिनुभएकी, (४९८) द्रव्यरूपा– पदार्थका रूपमा रहनुहुने, (४९९) दानवघ्नी– दानवहरूको नाश गर्नुहुने, (५००) दयाकरा– दयाकी खानी बनेर रहनुहुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१०१॥

(५०१) दुर्गरूपा– अगम्य स्वरूप भएकी, (५०२) दुराराध्या– दुःखले आराधना गरिनुहुने, (५०३) दुर्जया– अविजेय स्वरूप भएकी, (५०४) दुरतिक्रमा– कसैद्वारा पनि नाघ्न नसकिने स्वरूप भएकी, (५०५) देवेश्वरी– देवताहरूकी स्वामिनी, (५०६) दयाशीला– करुणामयी, (५०७) दिव्यमोक्षप्रदायिनी– अलौकिक आनन्दप्रद मोक्षसुख प्रदान गर्नुहुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१०२॥

(५०८) धीरा– धीरगम्भीर स्वभाव भएकी, (५०९) धीरप्रवाहा– वाग्वतीका रूपमा गम्भीर वेगले बग्नुहुने, (५१०) धाराप्रवाहिनी– विभिन्न धाराका रूपमा बग्नुहुने, (५११) सुधा– अमृतमयी, (५१२) धरित्री– पृथिवीसमान सहनशीला, (५१३) धारिणी– संसारलाई धारण गर्नुहुने, (५१४) धात्री– सबैको पालनपोषण गर्नुहुने, (५१५) धरणीधरवाहिनी– पर्वतहरूबाट निस्केर सागरमा जानका लागि बग्नुहुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१०३॥

धन्या धान्यधरा धीरा धारणा धरणीधरा। धराधरानना धैर्या धर्मात्मा धर्मरूपिणी ॥१०४॥
धीरूपा धिषणा धात्री धूम्राक्षा धर्मविग्रहा। ध्यानगम्या निशि ध्येया ध्यानानना धराश्रिता ॥१०५॥
ध्यानरूपा बुधध्याता ध्यानस्था ध्यानरूपिणी। ध्यानातीतामरध्याता ध्यातव्या ध्यानतत्परा ॥१०६॥
ध्यानेक्षणा धिया ध्येया ध्यानास्या ध्यानसंश्रिता। धीरध्याता धराधाना धराध्येया विधायिनी ॥१०७॥
नन्दिनी च निराधारा निष्कला निर्गुणा नदी। नीलघनस्वना नग्ना नानाजातिनिवासिनी ॥१०८॥
नागोपवीतिनी नाट्या नन्दा नृमुण्डधारिणी। नीलघनाभदेहा च निर्द्वन्द्वा नागनायिका ॥१०९॥

---

(५१६) धन्या- धनसम्पदाको मुहान बनेकी, (५१७) धान्यधरा- धान्य उत्पादन गरी सकलको पोषण गर्नुहुने, (५१८) धीरा- धैर्यले युक्त भएकी, (५१९) धारणा- साधक योगीको हृदयमा धारणा बनेर बस्नुहुने, (५२०) धरणीधरा- पृथिवीलाई धारण गर्ने, (५२१) धाराधरानना- बादललाई मुख बनाई जलको दोहन गर्नुहुने, (५२२) धैर्या- धृतिका रूपमा रहेकी, (५२३) धर्मात्मा- धर्मलाई आत्मरूप बनाउनुहुने, (५२४) धर्मरूपिणी- धर्मका रूपमा प्रकाशित हुनुहुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१०४॥

(५२५) धीरूपा- बुद्धिका रूपमा रहनुहुने, (५२६) धिषणा- वाणीकी शक्ति बनेर रहनुहुने, (५२७) धात्री- धाइआमाका रूपमा रहेकी, (५२८) धूम्राक्षा- कुइरा आँखा भएकी, (५२९) धर्मविग्रहा- धर्मको मूर्तिका रूपमा रहनुभएकी, (५३०) ध्यानगम्या- ध्यानद्वारा प्राप्त गर्न सकिने, (५३१) निशिध्येया- रातको अन्धकारमा ध्यान गर्न योग्य हुनुभएकी, (५३२) ध्यानानना- आफ्नो मुखमण्डलबाट नै ध्यानावस्था जताउनुहुने, (५३३) धराश्रिता- पृथिवीमा वाग्वती बनेर आश्रय लिनुभएकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१०५॥

(५३४) ध्यानरूपा- ध्यानको रूप धारण गर्नुहुने, (५३५) बुधध्याता- विद्वान्हरूबाट ध्यान गरिएकी, (५३६) ध्यानस्था- ध्यानमुद्रामा रहनुहुने, (५३७) ध्यानरूपिणी- ध्यानमग्न स्वरूप भएकी, (५३८) ध्यानातीता- ध्यानभन्दा पर समाधि अवस्थामा रहेकी, (५३९) अमरध्याता- देवताहरूद्वारा ध्यान गरिएकी, (५४०) ध्यातव्या- आत्मकल्याणको लागि ध्यान गर्न योग्य, (५४१) ध्यानतत्परा- नित्य ध्यानमुद्रामा रहनुहुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१०६॥

(५४२) ध्यानेक्षणा- ध्यानदृष्टिले हेर्नुहुने, (५४३) धिया ध्येया- बुद्धिवृत्तिद्वारा ध्यान गर्न योग्य, (५४४) ध्यानास्या- ध्यानमुखी, (५४५) ध्यानसंश्रिता- ध्यानमा नै रमेकी, (५४६) धीरध्याता- धीर पुरुषहरूले ध्यान गरिएकी, (५४७) धराधाना- पृथिवीमा आफूलाई स्थापित गराएकी, (५४८) धराध्येया- निरन्तर ध्यान गर्न योग्य, (५४९) विधायिनी- सकलसंसारकी विधायिका भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१०७॥

(५५०) नन्दिनी- सबैलाई आनन्द दिनुहुने, (५५१) निराधारा- आफ्नै आधारमा रहेकी, (५५२) निष्कला- कलारहित ब्रह्मरूपमा रहेकी, (५५३) निर्गुणा- सत्त्व आदि गुणरहित निर्मल ब्रह्मरूपमा रहेकी, (५५४) नदी- दक्षिणतर्फ गए पनि पछिबाट पूर्वतर्फ गई समुद्रमा मिल्ने हुँदा वाग्वती नदी भनी प्रसिद्ध भएकी, (५५५) नीलघनस्वना- कालो बादलझैं गडगड शब्दले गडगडाउने, (५५६) नग्ना- गङ्गाभन्दा पनि पवित्र भएकाले रजस्वला नहुने, कन्यासमान पवित्र मानिएकी, (५५७) नानाजातिनिवासिनी- सबै जातजातिका मुखमा वाणीका रूपमा रहेकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१०८॥

(५५८) नागोपवीतिनी- माहेश्वरीका रूपमा प्रकट हुँदा नागलाई जनै बनाई धारण गर्नुहुने, (५५९) नाट्यानन्दा- संसाररूप नाट्यकी सूत्रधार बनेर आनन्दको अनुभव गर्नुहुने, (५६०) नृमुण्डधारिणी- कालीका रूपमा रही टाउकाहरूको माला भिर्नुहुने, (५६१) नीलघनाभदेहा- नीलो बादलझैं नीलोजलको नीलिमाका कारण सुहाएकी, (५६२) निर्द्वन्द्वा- सांसारिक प्रपञ्चबाट पर रहेकी, (५६३) नागनायिका- कद्रूनामक नागसुन्दरीका रूपमा प्रकट हुनुभएकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१०९॥

नागेन्द्रदन्तसङ्काशा नरकनाशिनी नया। निर्भया निर्भरा निष्ठा नारायणी निरञ्जना ॥११०॥
निष्ठुरा च निराकारा नारसिंही च नोपमा। निशीथिनी निशाहन्त्री नानादुःखनिवारिणी ॥१११॥
नर्मदा करतोया च निष्कलङ्का च नाशिनी। शतद्रुसिन्धुसंवाहा नित्यानन्दविधायिनी ॥११२॥
त्रिनयना नृसिंहार्या नानाकारप्रवाहिनी। पापघ्नी पाविनी पद्मा पवित्रा पद्मपूजिता ॥११३॥
प्रज्ञारूपा प्रचण्डा च पद्मस्था पद्मसम्भवा। पद्माक्षी पद्मिनी प्रीता प्रकटवासिनी परा ॥११४॥
प्रीतिभक्ता च पश्यन्ती परब्रह्मावतारिणी। प्रभावती परात्मा च पद्मजा परमेश्वरी ॥११५॥

---

(५६४) नागेन्द्रदन्तसंकाशा- गजराज ऐरावतको दाँतझैं उज्ज्वल वर्ण भएकी, (५६५) नरकनाशिनी- भक्तका पापनाश गरी उनको नरकयात्रा पनि नाश गर्नुहुने, (५६६) नया- न्यायरूपिणी, (५६७) निर्भया- सबैकी नियामिका भएकीले निर्भय स्वभावकी, (५६८) निर्भरा- विश्वासरूपिणी, (५६९) निष्ठा- आस्थाका रूपमा रहेकी, (५७०) नारायणी- जलाधार भएकी वा विष्णुप्रियाका रूपमा रहेकी, (५७१) निरञ्जना- प्रकृति वा तीन गुणको लेप नलागेकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥११०॥

(५७२) निष्ठुरा- पापीहरूका प्रति निर्दया देखिने, (५७३) निराकारा- निराकार ब्रह्मका रूपमा रहेकी, (५७४) नारसिंही- नृसिंह भगवान्‌की शक्तिका रूपमा रहेकी, (५७५) नोपमा- अद्वितीय गुण र स्वभाव भएकी, (५७६) निशीथिनी- रातका रूपमा प्रकट हुने, (५७७) निशाहन्त्री- अज्ञानको कालो रातलाई चिर्नुहुने, (५७८) नानादुःखनिवारिणी- आधिभौतिक, आधिदैविक र आध्यात्मिक सन्ताप नाश गर्ने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१११॥

(५७९) नर्मदा- पवित्र रेवानदीका रूपमा रहेकी अथवा भक्तहरूलाई सुख प्रदान गर्ने, (५८०) करतोया- करतोया नदीका रूपमा प्रकट भएकी, (५८१) निष्कलङ्का- कलङ्करहित निर्मल रूप र स्वभाव भएकी, (५८२) नाशिनी- आराधक भक्तहरूका कलङ्क र पाप नाश गर्नुहुने, (५८३) शतद्रुसिन्धुसंवाहा- शतरुद्रा (सतलज) र सिन्धुनदीको बीचमा सरस्वती नदी बनेर प्रवाहित हुनुहुने, (५८४) नित्यानन्दविधायिनी- सरस्वतीका रूपमा उत्तम संस्कार र ब्रह्मविज्ञानको उपदेश गरी आनन्द प्रदान गर्नुहुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥११२॥

(५८५) त्रिनयना- तीन नयन भएकी भगवान् महेश्वरकी माहेश्वरी शक्तिकी रूपमा देखिनुहुने, (५८६) नृसिंहार्य्या- भगवान् नृसिंहकी नारसिंही शक्तिका रूपमा प्रकट हुनुहुने, (५८७) नानाकारप्रवाहिनी- नदीका रूपमा र सरस्वती भगवतीका रूपमा प्रकट हुँदा अनेक आकार धारण गर्नुहुने, (५८८) पापघ्नी- पाप नाश गर्नुहुने, (५८९) पावनी- सबैलाई पवित्र तुल्याउनुहुने, (५९०) पद्मा- गङ्गा नदी बनेर बग्नुहुने, (५९१) पवित्रा- अत्यन्त शुद्ध स्वरूप भएकी, (५९२) पद्मपूजिता- कमलद्वारा पूजा गरिएकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥११३॥

(५९३) प्रज्ञारूपा- अत्यन्त उज्ज्वल कोटिको मेधा बनेर रहनुहुने, (५९४) प्रचण्डा- अत्यन्त उग्रशक्तिसम्पन्न भई महाकालीका रूपमा प्रकट हुनुहुने, (५९५) पद्मस्था- कमलमा विराजमान हुनुहुने, (५९६) पद्मसम्भवा- ब्रह्माजीबाट उत्पन्न भएकी, (५९७) पद्माक्षी- कमलजस्ता नयनले सुहाएकी, (५९८) पद्मिनी- कमललताका रूपमा रहेकी अथवा नारीका चित्रिणी, हरिणी, हस्तिनी र पद्मिनी यी चारभेद मध्ये सर्वोत्तम लक्षणवती पद्मिनीका गुणले सुहाएकी, (५९९) प्रीता- भक्तहरूमाथि सधैं प्रसन्न हुनुहुने, (६००) अप्रकटवासिनी- प्राणीहरूका घटघटमा लुकेर परमात्माका रूपमा निवास गर्नुहुने, (६०१) परा- अनन्त र अनादि शक्तिका रूपमा रहेकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥११४॥

(६०२) प्रीतिभक्ता- भक्तहरूलाई अत्यन्त मन पराउनुहुने, (६०३) पश्यन्ती- वाणीको एउटा भेद पश्यन्तीका रूपमा रहेकी, (६०४) परब्रह्मावतारिणी- परब्रह्मको सरस्वती अवतारका रूपमा रहेकी, (६०५) प्रभावती- कान्तिमती, (६०६) परात्मा- परम आत्माका रूपमा रहेकी, (६०७) पद्मजा- कमलबाट उत्पन्न भएकी, (६०८) परमेश्वरी- अनादि ब्रह्मरूपा भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥११५॥

पातकघ्नी पराशक्तिः पञ्चमी पञ्चमारुता। पञ्चात्मा पञ्चतत्त्वा च पञ्चत्वस्था परापरा ॥११६॥
पञ्चपीठेश्वरी पूर्णा पूरका पञ्चमीप्रिया। पूर्णिमा पूर्णरूपा च पूर्णेश्वरी परात्परा ॥११७॥
फणीन्द्रभूषणा फेरुः स्फटिकाभा प्रवाहिनी। स्फोटा स्फोटप्रवाहा च स्नातकस्फोटनाशिनी ॥११८॥
फणिहारा फलाद्यार्या स्फटिकार्णप्रवाहिनी। फेरुस्था फेरुरावा च फेत्कारिणी तथा प्रभा ॥११९॥
वैष्णवी वामरूपा च वामेश्वरी वरप्रदा। वामस्था वाहिनी वामा वामेशा वामलोचना ॥१२०॥

---

(६०९) पातकघ्नी- पापनाशिनी, (६१०) पराशक्तिः- सर्वोच्च शक्ति भुवनेश्वरी, (६११) पञ्चमी- पृथिवी, तेज, हावा, आकाश र जल यी पाँच भूतमध्ये जलरूप पाँचौं तत्त्वका रूपमा रहेकी, (६१२) पञ्चमारुता- प्राण, अपान, व्यान, उदान र समान गरी पाँच प्राणका रूपमा रहेकी, (६१३) पञ्चात्मा- गणेश, शिव, विष्णु, सूर्य र शक्ति गरी पाँच रूपमा रहेकी, (६१४) पञ्चतत्त्वा- पृथिवी, जल, तेज, वायु र आकाश गरी पाँच तत्त्वका रूपमा रहेकी, (६१५) पञ्चत्वस्था- भौतिक पाँच तत्त्वबाट बनेको शरीर विलीन हुँदा बाँकी रहने सूक्ष्म शरीरसहित आत्मतत्त्वका रूपमा रहेकी, (६१६) परापरा- ईश्वरको साथ परा र जीवको साथ अपरा प्रकृतिका रूपमा रहेकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥११६॥

(६१७) पञ्चपीठेश्वरी- शरीर, चित्त, मन, बुद्धि र आत्मा गरी पाँच पीठकी स्वामिनी, (६१८) पूर्णा- सम्पूर्ण आत्माका गुणले परिपूर्ण भएकी, (६१९) पूरका- प्राणवायुलाई भरेर जीवको जीवनलाई स्पन्दित गर्नुहुने, (६२०) पञ्चमीप्रिया- वसन्त पञ्चमी अथवा श्रीपञ्चमीलाई मन पराउनुहुने, (६२१) पूर्णिमा- चन्द्रकलाले परिपूर्ण भएको पूर्णिमा तिथिका रूपमा रहेकी, (६२२) पूर्णरूपा- सत्, चित् र आनन्दको स्वरूपमा रहने पूर्ण ब्रह्ममयी भुवनेश्वरी, (६२३) पूर्णेश्वरी- सर्वगुणसम्पन्न भुवनेश्वरी देवी, (६२४) परात्परा- परमतत्त्वभन्दा पनि पर रहेकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥११७॥

(६२५) फणीन्द्रभूषणा- शेषनागलाई अलङ्कारका रूपमा धारण गर्नुहुने, (६२६) फेरुः- तान्त्रिक साधना गर्नेहरूका सामु शृगालीको रूप धारण गर्नुहुने, (६२७) स्फटिकाभा- स्फटिकझैं उज्ज्वल आभा भएकी, (६२८) प्रवाहिनी- निरन्तर बगिरहने, (६२९) स्फोटा- व्याकरणशास्त्रअनुसार स्फोट (ध्वनि) का रूपमा रहेकी, (६३०) स्फोटप्रवाहा- ध्वनिका रूपमा फैलिनुहुने, (६३१) स्नातकस्फोटनाशिनी- विद्यामा समर्पित स्नातकहरूका शारीरिक खटिरा आदि रोग नाश गरी उनीहरूलाई शास्त्रचिन्तनमा अग्रसर तुल्याउनुहुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥११८॥

(६३२) फणिहारा- शेषनागलाई हारका रूपमा धारण गर्नुहुने, (६३३) फलाद्यार्या- फलदायिनी परमेश्वरी, (६३४) स्फटिकार्णा- स्फटिकसमान उज्ज्वल जल भएकी, (६३५) फलप्रदा- फलदायिनी, (६३६) फेरुस्था- शृगालमा सवार हुनुहुने, (६३७) फेरुरावा- स्यालको जस्तो आवाज निकाल्नुहुने, (६३८) फेत्कारिणी- हुइयाँ हुइयाँ आवाज गर्ने शृगालीका रूपमा रही मुखबाट आगो छोड्नुहुने, (६३९) प्रभा- कान्तिका रूपमा प्रकट हुनुहुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥११९॥

(६४०) वैष्णवी- विष्णुकी प्रिया अथवा शक्तिका रूपमा रहनुहुने, (६४१) वामरूपा- भगवान् शिवको रूप लिएर वामेश्वरी भई प्रकट हुनुहुने, (६४२) वामेश्वरी- भगवान् वामदेव शिवकी प्राणेश्वरी, (६४३) वरप्रदा- वरदान दिनुहुने देवी, (६४४) वामस्था- भगवान् शिवकी सङ्गिनी बनेर रहनुहुने, (६४५) वाहिनी- वामदेव शिवको सिद्धान्तलाई धारण गर्नुहुने, (६४६) वामा- अत्यन्त राम्री, (६४७) वामेशा- वामदेव शिवकी प्राणेश्वरी, (६४८) वामलोचना- अत्यन्त सुन्दरी अथवा सुन्दर एवं आकर्षक नयनयुगलले सुहाएकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१२०॥

वरेण्या वरदा बाला वरार्या वरदायिनी। विमला च विशालाक्षी विश्वाक्षी विन्दुवासिनी ॥१२१॥
विश्वात्मा च विरूपाक्षी विभवा विन्ध्यवासिनी। बोधिनी वीरजा वीरा विश्वयोनिश्च वत्सला ॥१२२॥
विश्वा सर्वसुधाबीजा विशालामृतवाहिनी। विद्याधरी च विद्यात्मा वैखरी वामकेश्वरी ॥१२३॥
वेदरूपा च च वेदान्ता वेदाङ्गा वेदवल्लभा। वाराही वासवी वाणी वाराणसीनिवासिनी ॥१२४॥
भवानी भववन्द्या च भूमिस्था भूमिभूषणा। भागीरथी भवाराध्या भवमाता भवेश्वरी ॥१२५॥
भयावहा भवानन्दा भयङ्करी भयनाशिनी। प्रभादेवी भगेशी च भाविनी भवनाशिनी ॥१२६॥

---

(६४९) वरेण्या- सबैद्वारा विद्याकी अधिष्ठात्री सरस्वतीका रूपमा वरण गर्न योग्य, (६५०) वरदा- वरदायिनी, (६५१) बाला- त्रिपुरसुन्दरी वा षोडशीका रूपमा प्रकट हुनुहुने, (६५२) वरार्या- उत्तम गुणले सम्पन्न हुनुभएकी देवी, (६५३) वरदायिनी- भक्तलाई वरदान दिनुहुने देवी, (६५४) विमला- निर्मल आत्मा भएकी भगवती, (६५५) विशालाक्षी- विशाल नयन भएकी सुन्दरी देवी, (६५६) विश्वाक्षी- विश्वव्यापक दर्शनशक्ति भएकी, (६५७) बिन्दुवासिनी- रेखा र बिन्दुमध्ये बिन्दुमा रहने अथवा विन्ध्यवासिनी भगवतीका रूपमा विराजमान हुनुहुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१२१॥

(६५८) विश्वात्मा- विश्वरूपिणी, (६५९) विरूपाक्षी- सदाशिवकी प्रिया वा तीन नयनले सुहाएकी, (६६०) विभवा- संसारकै ऐश्वर्यका रूपमा रहेकी, (६६१) विन्ध्यवासिनी- विन्ध्यवासिनी नामक सिद्धिलक्ष्मीका रूपमा रहेकी, (६६२) बोधिनी- मानिसलाई वेद आदि शास्त्रको रहस्यबोध गराउनुहुने, (६६३) वीरजा- नैष्ठिक ब्रह्मचारी ब्रह्माजीकी छोरी, (६६४) वीरा- नैष्ठिक ब्रह्मचारिणी, (६६५) विश्वयोनिः- सकल ब्रह्माण्डकी आमा, (६६६) वत्सला- वात्सल्यले परिपूर्ण वत्सला पार्वतीका रूपमा प्रकट हुनुभएकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१२२॥

(६६७) विश्वा- विश्वमा व्याप्त हुनुहुने, (६६८) सर्वसुधाबीजा- सम्पूर्ण अमृततत्त्वकी कारक बनेर रहेकी, (६६९) विशाला- विराट्रूप धारण गर्नुहुने, (६७०) अमृतवाहिनी- वाणीका रूपमा र जलरूपमा अमृतलाई प्रवाहित गर्नुहुने, (६७१) विद्याधरी- विद्याधारण गर्ने अथवा विद्याधरसुन्दरीका रूपमा प्रकट हुनुहुने, (६७२) विद्यात्मा- विद्यामयी, (६७३) वैखरी- वाणीका चार भेदमध्ये लोकव्यवहारका लागि उपयोगी वैखरी वाणीका रूपमा रहनुभएकी, (६७४) वामकेश्वरी- वामकेश्वर शिवकी प्राणेश्वरी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१२३॥

(६७५) वेदरूपा- ज्ञानरूपा अथवा ऋक्, यजु आदि चार वेदका रूपमा रहेकी, (६७६) वेदान्ता- उपनिषद्ज्ञानका रूपमा रहेकी, (६७७) वेदाङ्गवेदवल्लभा- अङ्गसहित वेदहरूलाई मन पराउनुहुने, (६७८) वाराही- वराह भगवान्की शक्तिका रूपमा रहनुभएकी, (६७९) वासवी- इन्द्राणीका रूपमा प्रकट हुनुहुने, (६८०) वाणी- सरस्वती वा वाक् शक्तिका रूपमा रहनुहुने, (६८१) वाराणसीनिवासिनी- वाराणसीतीर्थमा विशालाक्षी, अन्नपूर्णा आदिको रूप लिएर विराजमान हुनुहुने भगवती वाग्वतीलाई म मप्रणाम गर्दछु ॥१२४॥

(६८२) भवानी- भगवान् शिवकी अर्धाङ्गिनी, (६८३) भववन्द्या- संसारकी वन्दनीया भगवती, (६८४) भूमिस्था- पृथिवीमा रही वाग्वती अथवा सरस्वती नदीका रूपमा बग्नुहुने, (६८५) भूमिभूषणा- वाग्वती एवं सरस्वतीका रूपमा पृथिवीको अलङ्कार बनेर रहनुभएकी, (६८६) भागीरथी- भागीरथी गङ्गाका रूपमा रहनुभएकी, (६८७) भवाराध्या- भगवान् शङ्करकी आराधनीया अथवा संसारकी आराधनीया भगवती, (६८८) भवमाता- संसारकी आमा, (६८९) भवेश्वरी- संसारकी ईश्वरी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१२५॥

(६९०) भयावहा- पापीजनका लागि भयङ्कर रूपमा देखिनुहुने, (६९१) भवानन्दा- भगवान् शङ्करका साथमा रमाउनुहुने, (६९२) भयङ्करी- पापीका निमित्त डरलाग्दी, (६९३) भयनाशिनी- सज्जनहरूको भयनाश गर्नुहुने, (६९४) प्रभादेवी- कान्तिमयी देवी, (६९५) भगेशी- ६ किसिमका ऐश्वर्यकी स्वामिनी, (६९६) भाविनी- महत्त्वाकाङ्क्षा भएकी परब्रह्मरूप शिवकी पतिव्रता पत्नी, (६९७) भवनाशिनी- साधकलाई संसारको आवागमनबाट छुट्याउनुहुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१२६॥

भक्तिगम्या च भीतिघ्नी भास्करी भुवनेश्वरी। भक्तिवरप्रदा भव्या भ्रामरी भगमालिनी ॥१२७॥
भक्तितुष्टा च भेरुण्डा भुक्तिदा भवतोषिणी। भावना भुवनेशी च भक्तेशा भवलोचना ॥१२८॥
भास्वद्देहा च भव्यास्या भावती भवरञ्जनी। भूभूषणा च भूतस्था भूमिभूषणवाहिनी ॥१२९॥
भगवती भवात्मा च भवदुःखप्रभञ्जनी। भीमरूपा भवभ्रान्तिर्भव्या भव्यार्चिताननना ॥१३०॥
भीमादेवी शुभा भद्रा भीमा भीमनिनादिनी। भूतेशी भूतधात्री च भूतस्था भूतभाविनी ॥१३१॥
माहेश्वरी महामाया मुञ्जवदद्रिसङ्गमा। मशेखरी महामारी मान्या महेशनन्दिनी ॥१३२॥

---

(६९८) भक्तिगम्या- भक्तिद्वारा दर्शन दिनुहुने, (६९९) भीतिघ्नी- भयनाश गर्नुहुने, (७००) भास्करी- सूर्यकी प्रभाशक्तिका रूपमा रहेकी, (७०१) भुवनेश्वरी- ब्रह्मरूपिणी भगवती, (७०२) भक्तिवरप्रदा- भक्ति गर्नेलाई वरदान दिनुहुने, (७०३) भव्या- दिव्य र विराट्रूप भएकी, (७०४) भ्रामरी- दुर्गाकी शक्ति भएर प्रकट भएकी, (७०५) भगमालिनी- ऐश्वर्यको माला धारण गर्नुहुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१२७॥

(७०६) भक्तितुष्टा- भक्तिबाट सन्तुष्ट हुने, (७०७) भेरुण्डा- पापीका निमित्त भयङ्करी अथवा संसाररूप गर्भधारण गर्नुहुने अथवा श्रीविद्याको एक भेद भेरुण्डाका रूपमा रहेकी, (७०८) भुक्तिदा- भोगदायिनी, (७०९) भवतोषिणी- आफ्नो प्रेम, सेवा र मधुर वाणीद्वारा शिवलाई तुष्टि दिनुहुने, (७१०) भावना- ध्यान, चिन्तन वा विचारका रूपमा रहेकी, (७११) भुवनेशी- मणिद्वीपकी स्वामिनी, (७१२) भक्तीशा- भक्तितत्त्वकी ईश्वरी, (७१३) भवलोचना- परमब्रह्मलाई जगत्को नजारा देखाउने आँखा बनेर रहेकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१२८॥

(७१४) भास्वद्देहा- दीप्तिमय शरीरले सुहाएकी, (७१५) भव्यास्या- भव्य मुखमण्डल भएकी, (७१६) भावती- आभामयी, (७१७) भवरञ्जनी- संसारलाई आनन्द एवं मनोरञ्जन प्रदान गर्ने, (७१८) भूभूषणा- धर्तीकी अलङ्कार भई प्रवाहित हुने, (७१९) भूतस्था- सकल प्राणीहरूका हृदयमा वास गर्नुहुने, (७२०) भूमिभूषणवाहिनी- पृथिवीको अलङ्कार पवित्र जल वा ज्ञान प्रवाहित गर्नुहुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१२९॥

(७२१) भगवती- ६ किसिमका ऐश्वर्यले सुहाएकी, (७२२) भवात्मा- भगवान् शङ्करकी आत्माका रूपमा रहेकी, (७२३) भवदुःखप्रभञ्जनी- संसारका दुःख नाश गर्नुहुने, (७२४) भीमरूपा- समयानुसार डरलाग्दी भएर देखिनुहुने, (७२५) भवभ्रान्तिः- माया बनेर संसारलाई भ्रममा डुबाउनुहुने, (७२६) भव्या- कल्याणमयी, (७२७) भव्यार्चितानना- उत्तम पुरुषद्वारा वाङ्मयरूप मुखको पूजा गरिएकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१३०॥

(७२८) भीमादेवी- दुर्गा सप्तसतीअनुसार भीमादेवीको नामले अवतीर्ण भएकी दुर्गा, (७२९) शुभा- मङ्गलमयी, (७३०) भद्रा- कल्याणमयी, (७३१) भीमा- पापीहरूका निमित्त डरलाग्दी, (७३२) भीमनिनादिनी- भयङ्कर गर्जन गर्दै पहाडबाट मैदानतर्फ बग्ने, (७३३) भूतेशी- प्राणीहरूकी स्वामिनी, (७३४) भूतधात्री- प्राणीहरूकी संरक्षिका, (७३५) भूतस्था- प्राणीहरूका घटघटमा बास गर्नुहुने, (७३६) भूतभाविनी- प्राणीहरूमा दया गर्नुहुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१३१॥

(७३७) माहेश्वरी- भगवान् महेश्वर शिवकी अर्धाङ्गिनी, (७३८) मुञ्जवदद्रिसङ्गमा- मुञ्जवान् नामक पर्वतमा प्रकट भएकी, (७३९) मशेखरी- मुञ्जवान् पर्वतको शिखरबाट प्रवाहित हुने, (७४०) महामारी- प्राणीहरूको संहारको समयमा महामारीका रूपमा प्रकट हुने, (७४१) मान्या- सबैकी माननीया, (७४२) महेशनन्दिनी- भगवान् शङ्करलाई प्रसन्न र आनन्दी तुल्याउनुहुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१३२॥

महाज्योतिर्महामेधा मायापुरनिवासिनी। मातङ्गिनी मनोरूपा महाभूता च मध्यमा ॥१३३॥
मणिपूरकमध्यस्था मोहिनी विश्वमोहिनी। महाधृतिर्महाकाली मदिरा मन्दितानना ॥१३४॥
महामतिर्महासूक्ष्मा मधुमती महोदरी। मेनकागर्भजा मास्था मङ्गला च सुमङ्गला ॥१३५॥
मन्दहासा महाद्रंष्ट्रा मालिका च महोमखा। मदालसा मनोज्ञा च मनस्विनी मनोहरा ॥१३६॥
मन्दाकिनी महाभद्रा मोक्षदात्री च माधवी। मातरा मन्त्ररूपा च मन्त्रमाता मणिप्रभा ॥१३७॥
मुद्राप्रिया च मेरुस्था मन्त्रात्मिका मनोरमा। मृगेन्द्राद्रिप्रवाहा च महेशमुखसम्भवा ॥१३८॥

---

(७४३) महाज्योतिः- महाप्रकाशले परिपूर्ण भएकी, (७४४) महामेधा- महामनीषाका रूपमा रहेकी, (७४५) मायापुरीनिवासिनी- हरिद्वारमा मनसादेवी एवं चण्डीदेवीका रूपमा विराजमान, (७४६) मातङ्गिनी- दश महाविद्यामध्ये एक मातङ्गी विद्याका रूपमा रहेकी अथवा जरा र मृत्यु नाश गर्ने मातङ्गिनी मुद्राका रूपमा रहेकी, (७४७) मनोरूपा- मनका रूपमा रही मनन गर्नुहुने, (७४८) महाभूता- पाँच महाभूतका रूपमा रहनुहुने, (७४९) मध्यमा- संसारका नवयुवतीहरूको गतिविधिमा व्यक्त हुने अथवा वाणीका ४ भेदमध्ये एक मध्यमावाणीका रूपमा रहनुभएकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१३३॥

(७५०) मणिपूरकमध्यस्था- मणिपूरचक्रको माझमा रहनुभएकी, (७५१) मोहिनी- सम्मोहक स्वरूप भएकी, (७५२) विश्वमोहिनी- विश्वलाई नै मुग्ध तुल्याउनुहुने, (७५३) महाधृतिः- महान् धैर्यका रूपमा रहनुभएकी, (७५४) महाकाली- महाकालीका रूपमा रहनुभएकी, (७५५) मदिरा- दुर्गा भगवतीका अनेक भेदमध्ये एक भेद मदिरानामले प्रसिद्ध हुनुभएकी, (७५६) मन्दितानना- दयाले प्राणीहरूमा दृष्टि लगाउँदा कोमल अनुहार गराउनुहुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१३४॥

(७५७) महामतिः- अत्यन्त बुद्धिमती, (७५८) महासूक्ष्मा- आत्मरूपले रहँदा अत्यन्त सूक्ष्म हुने, (७५९) मधुमती- ऋतम्भरा प्रज्ञाका रूपमा रहेकी, (७६०) महोदरी- विशाल ब्रह्माण्डलाई आफ्नै पेटभित्र धारण गर्नुहुने, (७६१) मेनकागर्भजा- हिमालयकी पत्नी मेनाको गर्भबाट पार्वती नामले पैदा हुनुभएकी, (७६२) मास्था- ज्ञानको प्रकाशमा रहनुहुने, (७६३) मङ्गला- मङ्गलचण्डिकाका रूपमा रहनुभएकी, (७६४) सुमङ्गला- विवाह, उपनयन, यज्ञ आदि मङ्गलका रूपमा रहनुभएकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१३५॥

(७६५) मन्दहासा- मन्द मीठो मुस्कान भएकी, (७६६) महाद्रंष्टा- कालीको अवतारमा ठूलो दाह्रा लिएर प्रकट हुनुहुने, (७६७) मालिका- पार्वतीको स्वरूप मानिने बडी मालिका एवं छोटी मालिकाका रूपमा रहनुभएकी, (७६८) महोमखा- पर्व, उत्सव र यज्ञयागका रूपमा रहनुभएकी, (७६९) मदालसा- मदालसा नामकी ज्ञानी नारीका रूपमा प्रकट भएकी, (७७०) मनोज्ञा- अतिशय सुन्दर रूपकी स्वामिनी, (७७१) मनस्विनी- अत्यन्त बुद्धिमती, (७७२) मनोहरा- चित्ताकर्षक सौन्दर्यले सुहाएकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१३६॥

(७७३) मन्दाकिनी- केदारबाट पैदा हुने मन्दाकिनी नदीका रूपमा रहेकी, (७७४) महाभद्रा- गङ्गाका रूपमा रहनुभएकी, (७७५) मोक्षदात्री- भक्तलाई मुक्ति दिने, (७७६) माधवी- वसन्तकान्तिका रूपमा व्यक्त हुने अथवा माधवी लताका रूपमा प्रकट हुने अथवा भगवान् विष्णुकी शक्ति, (७७७) मातरा- राज्यलक्ष्मीभन्दा उत्तम वैकुण्ठ लक्ष्मीका रूपमा रहेकी, (७७८) मन्त्ररूपा- अनेक मन्त्रहरूका रूपमा रहनुभएकी, (७७९) मन्त्रमाता- मन्त्रहरूकी जननी, (७८०) मणिप्रभा- आफ्नो शरीरमा धारण गरिएका मणिको कान्तिले कान्तिमयी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१३७॥

(७८१) मुद्राप्रिया- ज्ञानमुद्रा, वैराग्यमुद्रा आदि अनेकौं मुद्रा मन पराउनुहुने, (७८२) मेरुस्था- कुण्डलिनीयोगअनुसार सहस्रारचक्रमा कुण्डलिनीका रूपमा प्रवेश गरी अमृत छचल्काउँदै आफ्नै ठाउँमा फर्कने, (७८३) मन्त्रात्मिका- मन्त्रस्वरूपिणी, (७८४) मनोरमा- अत्यन्त सुन्दर, (७८५) मृगेन्द्राद्रिप्रवाहा- काठमाडौं उपत्यकाको उत्तरतर्फ रहेको मृगेन्द्रपर्वतबाट प्रवाहित हुने, (७८६) महेशमुखसम्भवा- भगवान् शिवको मुख मानिएको वाग्द्वारबाट निस्केकी अथवा विद्याका रूपमा भगवान् शङ्करको मुखबाट पैदा हुनुभएकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१३८॥

मणिमतिर्महावेगा मणिमुकुटसम्भवा । याज्ञेया यमुना ज्येष्ठा यज्ञमाता यशस्विनी ॥१३९॥
यज्ञाङ्गी यामरूपा च यज्ञरूपा यशोमयी । यज्ञप्रिया च यज्ञेशा यज्ञभोक्त्री यशःप्रिया ॥१४०॥
यशोदागर्भसञ्जाता यशःपूर्णा यशोबला । यादःप्रसेविता याम्या यातुधानप्रपूजिता ॥१४१॥
योगसारा युगाद्या च योगेश्वरी ह्ययोनिजा । योगीशा योगरूपा च योगीन्द्रहृदयाश्रिता ॥१४२॥
योगिनीसेविता योग्या योगीश्वरा युगस्थिता । योगीश्वरास्यसम्भूता योगसिद्धा यशोमयी ॥१४३॥
योगोद्भवा सुयोगार्य्या योगेन जलवाहिनी । रसोत्तमप्रवाहा च रुद्रहृद्रमणा रसा ॥१४४॥

---

(७८७) मणिमती- सरस्वतीका रूपमा चिन्तन गर्दा मणिझैँ उज्ज्वल मेधा भएकी, (७८८) महावेगा- ठूलो वेग भएकी, (७८९) मणिमुकुटसम्भवा- मणिमय मुकुटका साथ पैदा हुनुभएकी, (७९०) याज्ञेयी- द्रौपदीका रूपमा प्रकट भएकी, (७९१) यमुना- यमुना नदीका रूपमा प्रकट भएकी, (७९२) ज्येष्ठा- वाणी वा सरस्वतीका रूपमा सबै भन्दा पहिले पैदा भएकी, (७९३) यज्ञमाता- विनामन्त्र यज्ञ सम्भव नहुनाले यज्ञसञ्चालन गर्न सर्वप्रथम वेदका रूपमा प्रकट भएकी, (७९४) यशस्विनी- ज्ञानकी मुहान भएकाले सर्वत्र नाम चलेकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१३९॥

(७९५) यज्ञाङ्गी- मन्त्र र मन्त्रनिर्दिष्ट विधिका रूपमा यज्ञको अङ्गका रूपमा रहनुभएकी, (७९६) यागरूपा- मन्त्रद्वारा निष्पन्न गरिने महायज्ञका रूपमा रहनुभएकी, (७९७) यज्ञरूपा- साधारण यज्ञका रूपमा रहनुहुने, (७९८) यशोमयी- विद्या र यज्ञ-यागबाट निष्पन्न हुने कीर्तिका रूपमा रहनुभएकी, (७९९) यज्ञप्रिया- यज्ञयाग मन पराउने, (८००) यज्ञभोक्त्री- यज्ञबाट प्राप्त हुने फल भोग गर्ने, (८०१) यशःप्रिया- उत्तम कर्मबाट प्राप्त हुने यश मन पराउने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१४०॥

(८०२) यशोदागर्भसञ्जाता- यशोदाको गर्भबाट श्रीकृष्णकी बहिनीका रूपमा पैदा भई विन्ध्यवासिनीका रूपमा प्रसिद्ध भएकी, (८०३) यशःपूर्णा- उत्तम कर्म र प्रभावबाट उत्पन्न यशले उज्ज्वल भएकी, (८०४) यशोबला- यशकै शक्तिबाट संसारमा सबैद्वारा चिनिएकी, (८०५) यादःप्रसेविता- वाग्वतीका रूपमा जलचर जन्तुद्वारा सेवा गरिएकी, (८०६) याम्या- उत्पत्ति हुनासाथ दक्षिणदिशातर्फ बगेकी, (८०७) यातुधानप्रपूजिता- राक्षसहरूद्वारा पनि विद्याका रूपमा आराधना गरिएकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१४१॥

(८०८) योगसारा- योगको सार समाधिका रूपमा रहनुभएकी, (८०९) युगाद्या- युगादि तिथिका रूपमा रहेकी, (८१०) योगेश्वरी- योगद्वारा आराध्या वा योगशास्त्रकी ईश्वरी, (८११) अयोनिजा- कुनै पनि आमाको योनिबाट पैदा नभएकी, (८१२) योगीशा- योगीहरूकी आराध्या स्वामिनी, (८१३) योगरूपा- अष्टाङ्ग योगद्वारा जीव र शिवलाई एकाकार गराउने, (८१४) योगीन्द्रहृदयाश्रिता- योगीन्द्र भगवान् शिवको हृदयमा विराजमान हुनुभएकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१४२॥

(८१५) योगिनीसेविता- भगवतीको परिवारमा रहेका ६४ योगिनीहरूद्वारा सेवा गरिएकी, (८१६) योग्या- सृष्टि, पालन, संहार गर्न समर्थ भएकी, (८१७) योगीश्वरी- योगीहरूकी आराध्या कुण्डलिनी भगवती, (८१८) युगस्थिता- प्रत्येक युगमा धर्मरक्षाका लागि विभिन्न अवतार लिनुहुने, (८१९) योगीश्वरास्यसम्भूता- योगीहरूका ईश्वर सदाशिव परमात्माको मुखारबिन्दबाट प्रकट हुनुभएकी, (८२०) योगसिद्धा- योगद्वारा सिद्ध हुनुभएकी देवी, (८२१) यशोमयी- कीर्तिरूपले रही सर्वत्र व्याप्त हुनुहुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१४३॥

(८२२) योगोद्भवा- योगशास्त्रकी जननी, (८२३) सुयोगार्या- उत्तम योगकी ईश्वरी, (८२४) योगेन जलवाहिनी- योगद्वारा नै आफूलाई जलरूपमा परिणत गरी बगिरहेकी, (८२५) रसोत्तमप्रवाहा- उत्तम पवित्र जल प्रवाहित गर्नुहुने, (८२६) रुद्रहृद्रमणा- भगवान् पशुपतिको हृदयमा रमण गर्नुहुने, (८२७) रसा- रसरूप भएकी वा पृथिवीका रूपमा रहेकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१४४॥

रावणभूतिदा रम्भा राजराजेश्वरी वरा। रसवाहा च रम्भोरू रसभोक्त्री रसप्रिया ॥१४५॥
रागप्रिया रसज्ञा च रामा राधावतारिणी। रमणी राधिकाराध्या राज्यदा राज्यराजिता ॥१४६॥
राकिणी राज्यभोक्त्री च रौद्रीनाम वरप्रदा। रोहिणी रक्तपद्मस्था रतिज्ञा ऋद्धिरूपिणी ॥१४७॥
रुद्रप्रिया च रुद्री च रथस्था रथगामिनी। रत्नाङ्गी रक्तवासा च रक्ताक्षी रक्तदन्तिका ॥१४८॥
रत्नगृहा च रत्नस्था रत्नपद्माश्रिता रसा। लम्बोदरप्रसविनी मृगलाञ्छनशेखरा ॥१४९॥
लम्बिका नलिनोल्लासा लाकिनी ललितालका। ललना ललजिह्वा च ललिता लोहिताङ्गिनी ॥१५०॥

---

(८२८) रावणभूतिदा- गोकर्णमा तपस्या गर्ने पुलस्त्य ऋषिका नाति रावणलाई ऐश्वर्य दिनुहुने, (८२९) रम्भा- गौरीका रूपमा रहेकी अथवा सर्वोत्तम अप्सरा रम्भाका रूपमा प्रकट हुनुभएकी, (८३०) राजराजेश्वरी- त्रिपुरसुन्दरीका अनेकौं भेदमध्ये एक भेद राजराजेश्वरीका रूपमा रहनुभएकी, (८३१) वरा- सर्वोत्तम गुणसम्पन्न भगवती, (८३२) रसवाहा- ज्ञान वा जलका रूपमा आनन्द रस बगाउनुहुने, (८३३) रम्भोरू- केराको थम्बाझैं जाँघ भएकी सुन्दरी भगवती, (८३४) रसभोक्त्री- ब्रह्मरसपान गर्नुहुने, (८३५) रसप्रिया- आत्मानन्दमय रस रुचाउनुहुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१४५॥

(८३६) रागप्रिया- सङ्गीतका राग रुचाउनुहुने, (८३७) रसज्ञा- रसतत्त्वकी जानकार, (८३८) रामा- लक्ष्मी, सीता र राधाका रूपमा प्रकट हुनुहुने, (८३९) राधावतारिणी- वृषभानुकी छोरी श्रीकृष्णकी प्रेमिका राधाका रूपमा अवतार लिनुहुने, (८४०) रमणी- अत्यन्त रमणीय रूपले सुहाउनुभएकी, (८४१) राधिकाराध्या- भगवती राधाकी आराध्या गोलोकवासिनी भुवनेश्वरीका रूपमा रहनुभएकी, (८४२) राज्यदा- भक्तलाई राज्यसुख प्रदान गर्नुहुने, (८४३) राज्यराजिता- ब्रह्माण्ड राज्यकी महारानीका रूपमा सुहाउनुभएकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१४६॥

(८४४) राकिणी- कुण्डलीयोगअनुसार स्वाधिष्ठान चक्रमा रहनुभएकी देवी, (८४५) राज्यभोक्त्री- ब्रह्माण्डको राज्यभोग गर्नुहुने भुवनेश्वरी, (८४६) रौद्री- रुद्रकी शक्ति, (८४७) वरप्रदा- वरदायिनी, (८४८) रोहिणी- चन्द्रमाकी प्रिया रोहिणीका रूपमा रहेकी अथवा बलरामकी आमा, (८४९) रक्तपद्मस्था- रातो कमलमा विराजमान, (८५०) रतिज्ञा- रतितत्त्वकी ज्ञाता, (८५१) ऋद्धिरूपिणी- ऋद्धिका रूपमा रहनुभएकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१४७॥

(८५२) रुद्रप्रिया- भगवान् रुद्रकी प्रिया, (८५३) रुद्री- रुद्राभिषेकको पाठक्रियाका रूपमा रहनुभएकी, (८५४) रथस्था- मणिद्वीपको मणिमय रथमा विराजमान, (८५५) रथगामिनी- मणिद्वीपबाट मणिमय रथमा सवार भई विचरण गर्नुहुने, (८५६) रत्नाङ्गी- अङ्ग-प्रत्यङ्गमा रत्नालङ्कार धारण गर्नुहुने, (८५७) रक्तवासाः- राता वस्त्र धारण गर्नुहुने, (८५८) रक्ताक्षी- राता राता नयनले सुहाउनुभएकी, (८५९) रक्तदन्तिका- राता दाँत भएकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१४८॥

(८६०) रत्नगृहा- रत्नमय दरबारमा बस्नुहुने, (८६१) रत्नस्था- रत्नमय आसनमा विराजमान हुनुहुने, (८६२) रत्नपद्माश्रिता- रत्नमय कमलमा आश्रय लिनुहुने, (८६३) रसा- आनन्दमयी, (८६४) लम्बोदरप्रसूता- श्रीगणेशलाई पैदा गर्नुहुने देवी, (८६५) मृगलाञ्छनशेखरा- आफ्नो शिरमा चन्द्रमा धारण गर्नुहुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१४९॥

(८६६) लम्बिका- भगवती गौरी वा लक्ष्मीका रूपमा रहनुभएकी, (८६७) नलिनोल्लासा- कमलपुष्प खेलाउँदै उत्सव मनाउनुहुने, (८६८) लाकिनी- कुण्डलीयोगअनुसार मणिपूरचक्रमा विराजमान हुनुहुने देवी, (८६९) ललितालका- आकर्षक सिउँदोले सुहाउनुभएकी, (८७०) ललना- स्वेच्छापूर्वक संसारमा विचरण गरी संसारको सुख देखेर विचार गर्नुहुने, (८७१) ललज्जिह्वा- चपल जिब्रो भएकी महाकाली, (८७२) ललिता- ललिता त्रिपुरसुन्दरी, (८७३) लोहिताङ्गिनी- राता अङ्गप्रत्यङ्ग भएकी महाकाली भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१५०॥

लम्बोदरी सुलीलागा लोलकल्लोलमालिनी। लक्ष्मीर्लक्ष्मीप्रदा लक्ष्मा लक्ष्यालक्ष्यतरङ्गिणी ॥१५१॥
लक्ष्मीरूपा च लक्ष्मीस्था लक्ष्मीलक्ष्मविवर्धिना। वेणुवंशप्रिया ब्राह्मी वल्लकीवादनप्रिया ॥१५२॥
बालीशा बालिका बाला ब्रह्मस्वच्छोर्मिमालिनी। ब्रह्मस्था ब्रह्मरूपा च ब्रह्मेशी ब्रह्मपूजिता ॥१५३॥
ब्रह्मातीता परं ब्राह्मी ब्रह्मेशाच्युतवन्दिता। शिवेश्वरी शिवावाही शाम्भवी च शिवप्रिया ॥१५४॥
शर्वेश्वरी च शर्वाणी शान्ता शान्तप्रवाहिनी। शमना शक्तिरूपा च शार्ङ्गिणी सर्वमङ्गला ॥१५५॥
शतरुद्रा शची शीता शीला शीलप्रदा शुभा। शीलरूपा सुशीलस्था श्रीरूपा श्रीकरी शिवा ॥१५६॥
श्रीमयी श्रीनिवासा च श्रीमती श्रीधरार्चिता। श्रद्धाप्रिया सदाश्रद्धा श्रद्धात्मा च श्रुतिप्रिया ॥१५७॥

---

(८७४) लम्बोदरी- लम्बोदर गणेशकी शक्ति, (८७५) सुलीलागा- लीलामय पर्वतराज कैलासकी निवासिनी, (८७६) लोलकल्लोलमालिनी- चञ्चल तरङ्गमाला धारण गर्नुहुने, (८७७) लक्ष्मीः- विष्णुपत्नी, (८७८) लक्ष्मीप्रदा- सम्पत्ति र समृद्धि प्रदान गर्नुहुने, (८७९) लक्ष्मा- उत्तम लक्षणवती, (८८०) लक्षालक्ष्यतरङ्गिणी- लाखौं अदृश्य नदीहरूले भरिएकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१५१॥

(८८१) लक्ष्मीरूपा- लक्ष्मीका रूपमा रहनुभएकी, (८८२) लक्ष्मीस्था- शोभा र सम्पदाका रूपमा रहनुभएकी, (८८३) लक्ष्मीलक्ष्मावधिश्रिता- लक्ष्मीका परिचायक चिह्नको अन्तिम सीमासम्म प्रतिबिम्बित हुनुहुने, (८८४) वेणुः- कृष्णको बाँसुरीका रूपमा रहनुभएकी, (८८५) वंशप्रिया- देववंशकी सर्वाधिक लोकप्रिय देवता, (८८६) ब्राह्मी- ब्रह्मकी अनादि शक्ति, (८८७) वल्लकीवादनप्रिया- वीणा वादनलाई निकै मन पराउनुहुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१५२॥

(८८८) बालिशा- मानवधर्मअनुसार मलमूत्र त्याग नगर्ने प्रकृति भएकी देवी, (८८९) बालिका- बाला सुन्दरी, (८९०) बाला- श्रीविद्या अथवा सिद्धविद्या, (८९१) ब्रह्मस्वच्छोर्मिमालिनी- ब्रह्मकै निर्मल तरङ्गका साथ प्रवाहित हुनुहुने, (८९२) ब्रह्मस्था- ब्रह्ममा रहनुहुने, (८९३) ब्रह्मरूपा- ब्रह्मरूपमा रहनुभएकी, (८९४) ब्रह्मेशी- ब्रह्मरूप शिवकी पनि आराध्या, (८९५) ब्रह्मपूजिता- ब्रह्माजीद्वारा पूजित भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१५३॥

(८९६) ब्रह्मातीता- परब्रह्म भन्दा पर रहनुभएकी, (८९७) ब्राह्मी- ब्रह्माजीकी शक्ति, (८९८) ब्रह्मेशाच्युतवन्दिता- ब्रह्माजी, भगवान् विष्णु र शिवजीद्वारा वन्दित, (८९९) शिवेश्वरी- शिवकी स्वामिनी, (९००) शिवावाहा- शिवा (पार्वती) लाई वहन गर्ने, (९०१) शाम्भवी- शम्भुकी शक्ति, (९०२) शिवप्रिया- शिवकी प्रिया भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१५४॥

(९०३) शर्वेश्वरी- शिवकी प्राणेश्वरी, (९०४) शर्वाणी- शिवकी धर्मपत्नी, (९०५) शान्ता- शान्त स्वभावकी, (९०६) शमना- धर्मराजकी शक्ति, (९०७) शक्तिरूपा- शक्तिरूपिणी, (९०८) शार्ङ्गिणी- शार्ङ्ग धनु धारण गर्नुहुने, (९१०) सर्वमङ्गला- सबैको मङ्गल गर्नुहुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१५५॥

(९११) शतरुद्रा- मानसरोवरबाट बग्ने सतलज नदीका रूपमा रहनुभएकी, (९१२) शची- इन्द्राणीका रूपमा प्रकट हुनुहुने, (९१३) शीता- शीतलजलवाहिनी, (९१४) शीला- शील-सदाचारमयी, (९१५) शीलप्रदा- शीलको शिक्षा दिनुहुने, (९१६) शुभा- मङ्गलमूर्ति, (९१७) शीलरूपा- सदाचारिणी, (९१८) सुशीलस्था- सुशील मानिसको हृदयमा रहनुहुने, (९१९) श्रीरूपा- लक्ष्मीका रूपमा रहनुभएकी, (९२०) श्रीकरी- साधकलाई श्रीसम्पत्ति दिनुहुने, (९२१) शिवा- कल्याणमयी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१५६॥

(९२२) श्रीमयी- लक्ष्मीमयी, (९२३) श्रीनिवासा- लक्ष्मीकी आश्रयभूमि, (९२४) श्रीमती- लक्ष्मीले युक्त भएकी, (९२५) श्रीधरार्चिता- विष्णुद्वारा पूजा गरिएकी, (९२६) श्रद्धाप्रिया- श्रद्धा मन पराउनुहुने, (९२७) सदाश्रद्धा- नित्य श्रद्धामयी, (९२८) श्रद्धात्मा- श्रद्धाकै रूपमा रहनुभएकी, (९२९) श्रुतिप्रिया- वेदलाई रुचाउनुहुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१५७॥

श्रुतिप्रज्ञा शशाङ्काभा श्रुतिरूपा शुचिस्मिता। श्रुतिनी श्रुतिनेत्रा च श्रुतिज्ञा श्रुतिपूजिता ॥१५८॥
षट्पत्रपद्ममध्यस्था षट्चक्राधारसंश्रिता। चतुःषष्टिकलोपेता षष्ठस्वरी षडङ्गिनी ॥१५९॥
षडास्यजननी षष्ठी षडानना षरूपिणी। षोडशी षोडशाधारा षोडशारनिषङ्गिणी ॥१६०॥
साक्षात्सारतरा सारा सत्त्वस्था सर्ववन्दिनी। सात्त्विकी सत्त्वरूपा च सर्वसत्त्वनिवासिनी ॥१६१॥
संसारसारहा स्वाहा सुभङ्गा साररूपिणी। संवर्त्तान्ता निमेषादिसंवत्सरावतारिणी ॥१६२॥
सहस्रास्या सहस्राक्षा सावित्री शारदेश्वरी। सर्वेश्वरी च सत्यात्मा सर्वविद्या च शाकिनी ॥१६३॥
स्मृतिमयी च सूर्यात्मा सर्ववर्णान्तसारिणी। सर्वेन्द्रियाश्रिता सूक्ष्मा सर्वेन्द्रियेश्वरी स्वरा ॥१६४॥

---

(९३०) श्रुतिप्रज्ञा– वेदलाई बुद्धिका रूपमा प्रयोग गर्नुहुने, (९३१) शशाङ्काभा– चन्द्रमासमान कान्तिमयी, (९३२) श्रुतिरूपा– वेदकै रूपमा रहनुभएकी, (९३३) शुचिस्मिता– पवित्र मुस्कान भएकी, (९३४) श्रुतिनी– श्रुतिलाई संसारमा अग्रसारित गर्नुहुने, (९३५) श्रुतिनेत्रा– श्रुतिको आँखाले हेर्नुहुने, (९३६) श्रुतिज्ञा– श्रुतिको रहस्य जान्नुहुने, (९३७) श्रुतिपूजिता– श्रुतिद्वारा पूजित हुनुभएकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१५८॥

(९३८) षट्पत्रपद्ममध्यस्था– षट्दल कमलको बीचको त्रिकोणमा विन्दुरूपमा रहनुभएकी देवी, (९३९) षट्चक्राधारसंस्थिता– शरीरका ६ चक्रमध्ये मूल आधारचक्रमा रहनुभएकी, (९४०) चतुःषष्टिकलोपेता– चौसट्ठी कलासम्पन्न, (९४१) षष्ठस्वरी– सात स्वरमध्ये सबैको प्यारो धैवत स्वरका रूपमा रहनुभएकी, (९४२) षडङ्गिनी– वेदका ६ अङ्गका रूपमा रहनुभएकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१५९॥

(९४३) षडास्यजननी– कुमारकी माता पार्वतीका रूपमा रहनुभएकी, (९४४) षष्ठी– षष्ठी देवीका रूपमा रहनुभएकी, (९४५) षडानना– षडानन कुमारकी शक्तिका रूपमा रहनुभएकी, (९४६) षरूपिणी– मोक्षका रूपमा रहनुभएकी, (९४७) षोडशी– त्रिपुरसुन्दरी, (९४८) षोडशाधारा– १६ आधारमा रहनुहुने, (९४९) षोडशाधारनिषङ्गिणी– षोडशीका प्रत्येक चक्रमा रहनुहुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१६०॥

(९५०) साक्षात् सारतरा– प्रत्यक्ष भई नदीरूपमा बग्दा सारतत्त्वले समन्वित हुनुभएकी, (९५१) सारा– सारसर्वस्वका रूपमा शास्त्रको रहस्य धारण गर्नुहुने, (९५२) सत्त्वस्था– सत्त्वगुणको आश्रय लिएर रहनुहुने, (९५३) सर्ववन्दिनी– भगवान् शिवको वन्दना गर्नुहुने, ९५४) सात्त्विकी– सत्त्वगुणी स्वभाव भएकी, (९५५) सत्त्वरूपा– स।वगुणको रूप लिनुहुने, (९५६) सर्वसत्त्वनिवासिनी– सबै प्राणीहरूकी आत्मा भएर रहनुहुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१६१॥

(९५७) संसारसारहा– संसारको सारलाई हरण गर्नुहुने, (९५८) स्वाहा– यज्ञादिको निमित्त स्वाहादेवी बनेर अवतार लिनुहुने, (९५९) सुभङ्गा– राम्रो छाँट पारेर पहाड र मैदानमा बग्नुहुने, (९६०) साररूपिणी– सारतत्त्वका रूपमा रहनुभएकी, (९६१) संवर्तान्ता– कालको अन्तिम कला प्रलयसम्म रहनुहुने, (९६२) निमेषादिसंवत्सरावतारिणी– कालको आरम्भकला निमेषदेखि वर्षसम्म विभिन्नरूपमा प्रकट हुनुहुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१६२॥

(९६३) सहस्रास्या– हजारौं मुख भएकी, (९६४) सहस्राक्षा– हजारौं आँखा भएकी, (९६५) सावित्री– पञ्च प्रकृतिमध्ये एक सावित्री वा गायत्रीका रूपमा अवतार लिनुहुने, (९६६) सारदेश्वरी– शास्त्रको सार प्रदान गर्नुहुने भगवती सरस्वती, (९६७) सर्वेश्वरी– सबैकी स्वामिनी, (९६८) सत्यात्मा– सत्यरूपिणी, (९६९) सर्वविद्या– सम्पूर्ण विद्याका रूपमा रहनुभएकी, (९७०) साकिनी (शाकिनी)– कुण्डलीयोगअनुसार विशुद्ध चक्रमा निवास गर्नुहुने देवी वाग्वतीलाई म प्रणाम गर्दछु ॥१६३॥

(९७१) स्मृतिमयी– धर्मशास्त्रका रूपमा रहनुभएकी, (९७२) सूर्यात्मा– सूर्यका रूपमा प्रकट हुनुहुने, (९७३) सर्ववर्णान्तसारिणी– सबै वर्णहरूको हृदयासनमा विराजमान हुनुहुने, (९७४) सर्वेन्द्रियाश्रिता– सबै इन्द्रियकी शक्ति बनेर रहनुहुने, (९७५) सूक्ष्मा– सूक्ष्म स्वरूप भएकी, (९७६) सर्वेन्द्रियाधिदेवता– सबै इन्द्रियकी अधिष्ठात्री भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१६४॥

सिद्धात्मा सूक्ष्मरूपांशा सूक्ष्मस्था सोमभूषणा। सङ्ग्रामजयदा साध्वी सृष्टिस्थितिविनाशिनी ॥१६५॥
सर्वेशा सर्वरोगघ्नी सर्वग्रहविनाशिनी। सदसद्रूपिणी सत्ता स्वस्तिरूपा सरस्वती ॥१६६॥
ह्लादिनी हरवाग्जाता हरहासास्यनिसृःता। हृत्पद्मवासिनी हृष्टा ग्रहराक्षसनिग्रहा ॥१६७॥
हंसस्था हंसरूपा च हंसमूर्त्तिर्हरप्रिया। हिङ्गुला हंसदेवी च हाकिनी हरवल्लभा ॥१६८॥
हंसेश्वरी हकारात्मा हंसीगतिश्च हासिनी। हरवक्त्रोद्भवा हंसी हरिवन्द्या हरिप्रिया ॥१६९॥
हेमाभा हिमवत्पुत्री हिमकोटितपस्विनी। हिमाद्रितुङ्गसानोर्हि पतन्ती हिमशीकरा ॥१७०॥

---

(९७७) सिद्धात्मा- स्वप्रकाश आत्माका रूपमा स्वयं सिद्ध भएकी, (९७८) सूक्ष्मरूपांशा- सूक्ष्म आत्मांशका रूपमा रहनुहुने, (९७९) सूक्ष्मस्था- सबैभन्दा सूक्ष्म ब्रह्मतत्त्वमा रहनुहुने, (९८०) सोमभूषणा- माहेश्वरीका रूपमा रहँदा चन्द्रमालाई मुकुट बनाउनुहुने, (९८१) सङ्ग्रामजयदा- युद्धमा विजय दिलाउने, (९८२) साध्वी- पतिव्रता, (९८३) सृष्टिस्थितिविनाशिनी- जगत्को सृष्टि, पालन र संहार गर्नुहुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१६५॥

(९८४) सर्वेशा- सबैकी स्वामिनी, (९८५) सर्वरोगघ्नी- सबै रोग हरण गर्नुहुने, (९८६) सर्वग्रहविनाशिनी- सबै किसिमका ग्रहजन्य दोष निवारण गर्नुहुने, (९८७) सदसद्रूपिणी- सत् र असत् दुबै रूपमा रहनुभएकी, (९८८) सत्ता- अस्तित्वका रूपमा सधैँ रहनुहुने, (९८९) स्वस्तिरूपा- कल्याणरूपिणी, (९९०) सरस्वती- वाग्देवता वा वाग्वतीका रूपमा रहनुभएकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१६६॥

(९९१) ह्रदिनी- अनेकौँ कुण्ड वा तलाउबाट प्रकट भएका जलले भरिएकी, (९९२) हरवाग्जाता- भगवान् शङ्करको मुख र वाणीबाट प्रकट हुनुभएकी, (९९३) हरास्यहास्यनिःसृता- भगवान् शङ्करको मुखको अट्टहास्यबाट प्रकट हुनुभएकी, (९९४) हृत्पद्मवासिनी- प्राणीहरूको हृदयकमलमा वास गर्नुहुने, (९९५) हृष्टा- आत्मानन्दमा निमग्न भई प्रसन्न मुद्रामा देखिनुहुने, (९९६) ग्रहराक्षसनिग्रहा- आफ्नो पवित्र र प्रभावकारी तेजबाट ग्रह र राक्षसका दुष्प्रभाव निवारण गर्नुहुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१६७॥

(९९७) हंसस्था- हाँसलाई वाहन बनाई सवार गर्नुहुने, (९९८) हंसरूपा- सोऽहंबाट भनिने हंसगायत्री वा अजपा गायत्री मानिनुभएकी, (९९९) हंसमूर्तिः- हंसझैँ सेतो रूप धारण गर्नुहुने शुक्ला सरस्वती, (१०००) हरप्रिया- हरसुन्दरीको नामबाट प्रसिद्ध हुनुहुने, (१००१) हिङ्गुला- वर्तमान पाकिस्तान देशमा प्रसिद्ध दुर्गाको एक रूप मानिने देवी, (१००२) हंसदेवी- हंसमा सवारी गर्ने देवी, (१००३) हाकिनी- कुण्डलीयोगअनुसार आज्ञाचक्रमा रहनुभएकी देवी, (१००४) हरवल्लभा- शिवप्रिया पार्वती भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१६८॥

(१००५) हंसेश्वरी- हंस अर्थात् जीवात्माहरूकी ब्रह्मरूपा ईश्वरी, (१००६) हकारात्मा- गणेश, सूर्य, देवी, शिव र विष्णु यी पाँच देवता एवं महाकाली, महालक्ष्मी र महासरस्वतीलाई बुझाउने वर्ण हकारका रूपमा रहनुभएकी वाणी, (१००७) हंसीगतिः- साकार हुँदा हंसीको चालमा पदार्पण गर्नुहुने, (१००८) हासिनी- मधुर हासले सुहाउनुभएकी, (१००९) हरवक्त्रोद्भवा- भगवान् शिवको मुखबाट पैदा हुनुभएकी, (१०१०) हंसी- हंसीरूपा भगवती, (१०११) हरिवन्द्या- भगवान् विष्णुद्वारा वन्दनीया भुवनेश्वरी, (१०१२) हरिप्रिया- लक्ष्मीका रूपमा रहनुभएकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१६९॥

(१०१३) हेमाभा- स्वर्णिम कान्तिले सुहाउनुभएकी, (१०१४) हिमवत्पुत्री- हिमालयकी छोरीका रूपमा रहनुहुने, (१०१५) हिमकोटितपस्विनी- हिमालयको चुचुरोमा तपस्या गर्नुहुने पार्वतीका रूपमा रहनुभएकी, (१०१६) हिमाद्रितुङ्गसानोः पतन्ती- हिमालयका उच्चतम शिखरबाट झर्दै गरेकी, (१०१७) हिमशीकरा- हिउँका जलकणिकाले युक्त हुनुभएकी भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१७०॥

क्षोणीश्वरी क्षमारूपा क्षणदेश्वरशेखरा। क्षीणक्षेमङ्करी साक्षात्क्षोभिणी क्षितिवाहिनी ॥१७१॥
क्षामोदरी क्षमा क्षीणा यक्षेश्वरी सुदक्षिणा। क्षेमङ्करी क्षणाभाङ्गी क्षौमाम्बरी क्षणप्रभा ॥१७२॥
क्षेत्रज्ञा क्षेमदा क्षीणा अक्षयाज्ञेयभृङ्गिणी। क्षेत्रस्था क्षेत्रदेहा च मोक्षदा क्षिप्रवाहिनी ॥१७३॥

ब्रह्मोवाच

इत्येत्कथितं नाम्नां सहस्रं सुरदुर्लभम्। पुण्यात्पुण्यतरन्नाम वाग्वत्या नारदाञ्जसा ॥१७४॥
वर्णितानि सुरैः पूर्वं[१४] ब्रह्मविष्णुमहेश्वरैः। सुधामयानि नामानि वाग्वत्या पापहानि च[१५] ॥१७५॥

(१०१८) क्षोणीश्वरी- पृथिवीकी स्वामिनी, (१०१९) क्षमारूपा- क्षमादायिनी अथवा पृथिवीकै रूपमा रहनुभएकी, (१०२०) क्षणदेश्वरशेखरा- रात्रिका स्वामी चन्द्रमालाई मुकुटका रूपमा धारण गर्नुहुने, (१०२१) क्षीणक्षेमङ्करी- शक्तिहीन साधकहरूको कल्याण गर्नुहुने, (१०२२) क्षोभिणी- प्रलयको समयमा जगत्लाई क्षुब्ध तुल्याउनुहुने, (१०२३) क्षितिवाहिनी- पृथिवीमा वाग्वतीको रूप लिएर प्रवाहित हुनुहुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१७१॥

(१०२४) क्षामोदरी- पातलो कम्मरकी सुन्दरीका रूपमा सरस्वती भई अवतीर्ण हुनुहुने, (१०२५) क्षमा- पृथिवीरूपा, (१०२६) अक्षीणा- आत्मरूपमा सधैँ पूर्णरूपमा रहनुहुने, (१०२७) यक्षेश्वरी- कुबेर आदि यक्षहरूकी आराधनीया, (१०२८) सुदक्षिणा- भक्तहरूका लागि अत्यन्त अनुकूल हुनुहुने, (१०२९) क्षेमङ्करी- कल्याणदायिनी, (१०३०) क्षणापाङ्गी- विद्युत्झैँ चपल दृष्टिपात गर्नुहुने, (१०३१) क्षौमाम्बरी- रेशमी वस्त्र धारण गर्नुहुने, (१०३२) क्षणप्रभा- विद्युत्प्रभासमान चहकिली भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१७२॥

(१०३३) क्षेत्रज्ञा- क्षेत्र अर्थात् प्रकृतिभित्र जीवात्माका रूपमा रहनुहुने, (१०३४) क्षेमदा- कल्याणदायिनी, (१०३५) अक्षीणा- परपूर्ण ब्रह्मरूपा, (१०३६) अक्षया- अविनाशिनी, (१०३७) अक्षयभृङ्गिणी- अविनाशी ब्रह्मकी सेविका प्रकृतिका रूपमा रहनुभएकी, (१०३८) क्षेत्रस्था- प्रकृतिभित्र रहनुहुने, (१०३९) क्षेत्रदेहा- पाँच महाभूत, मन, बुद्धि, अहङ्कार एवं जीवका रूपमा नौ तत्त्वको देह धारण गर्नुहुने, (१०४०) मोक्षदा- मोक्षदायिनी, (१०४१) क्षिप्रगामिनी- तीव्र गतिमा प्रवाहित हुनुहुने भगवती वाग्वतीलाई म प्रणाम गर्दछु ॥१७३॥

ब्रह्माजीले भन्नुभयो – हे नारद ! देवताहरूले पनि प्राप्त गर्न नसक्ने अत्यन्त पुण्यदायी वाग्वतीको हजार नाम मैले तिमीलाई बताएँ। सम्पूर्ण पापको नाशक अमृतमय यो वाग्वतीसहस्रनाम अघि देवताहरूसित म स्वयं, विष्णु र महेश्वरले समेत वर्णन गरेका थियौं ॥१७४-१७५॥

१४. वर्णितः त्रिदशैः पूर्वम्, इति न.सं.पु.पाठः। १५. महिमानि च, इति न.सं.पु.पाठः।

सावधानपरो भूयाः[१६] पाठकानां विशेषतः। दूरस्थानामशक्तानां वक्ष्यामि तज्जलाप्लवम्॥१७६॥
एकधा पाठकस्तस्यां लभेत स्नानजं फलम्[१७]। द्विधा च पठनात् स्नाता लभेत मनसेप्सितम्[१८] ॥१७७॥
त्रिधा च पठनात्स्नात्वा भोगार्थी भोग्यमाप्नुयात्। चतुर्धा पठनात्सौख्यं पञ्चधा ध्यानमाप्नुयात्॥१७८॥
षड्धा पाठाद्धि कीर्त्तिः स्यात्प्रभुत्वं सप्तधा तथा। अष्टधा पठनात्सद्यश्चैश्वर्यजं फलं लभेत्॥१७९॥
नवधा चैव वाक्सिद्धिर्लोकमानपुरःसरम्। दशधा च दिगीशत्वमेकादशाद्धरात्मकः॥१८०॥
पूर्वेद्युः संयमस्तस्यां स्नानं कुर्यात्परेऽहनि। देव्यासक्तमना धीमान् पठनाद् तत्फलं लभेत्॥१८१॥
दर्भपाणिः सुसङ्कल्प्य यथेप्सितफलार्पितः। वाग्वतीजीवने स्नात्वा तदभिधानकं पठेत्॥१८२॥
एकधा पाठकः पापैः सांवत्सरैः प्रमुच्यते। एवं दशोत्तरं वृद्धया पाठात्किल्विषनाशनम्॥१८३॥
अशक्तानां प्रभूतानां भक्त्या तच्छ्रवणात्फलम्। अन्यासां सङ्गमे स्नानात् वाग्वत्यां स्याद्दशोत्तरम्॥१८४॥
सङ्गमे विष्णुपद्याश्च शतोत्तरं फलं लभेत्। मणिमतीसमाजे च सहस्रगुणितं लभेत्॥१८५॥
गङ्गायाः सङ्गमे स्नात्वा वाग्वत्याश्चायुताधिकम्।
गायत्र्याश्चैव सावित्र्या वाग्वत्याः पाठकेषु च[१९] ॥१८६॥

---

हे नारद ! सावधान भएर सुन। विशेष गरेर वाग्वतीको जलमा स्नान गर्न नसक्ने, टाढा–टाढा बसेका मानिसहरूका निमित्त के गर्ने म बताउँछु। यो सहस्रनाम एकपल्ट पाठ गऱ्यो भने वाग्वतीमा स्नान गरेको फल पाउँछ। स्नान गरेर दुईपटक पाठ गऱ्यो भने आफूले इच्छा गरेको सबै फल प्राप्त गर्दछ। स्नान गरेर तीनपटक पढ्यो भने सुख भोग चाहने व्यक्तिले सुखभोग पाउँछ। चारपटक पढ्यो भने सुख पाउँछ, पाँचपटक पढ्यो भने ध्यान गर्दा पाउने फल उसले पाउँछ। छ पटक पाठ गऱ्यो भने कीर्ति पाउँछ, सातपटक पाठ गऱ्यो भने कार्यालयको उच्च अधिकारी बन्न पाउँछ। आठपटक पाठ गऱ्यो भने ऐश्वर्य पाउँछ। नौपटक पाठ गऱ्यो भने वाक्सिद्धि हुन्छ। दुनियाँले उसलाई सम्मान गर्छन्। दशपटक पाठ गऱ्यो भने दिशाको मालिक बन्छ, एघारपटक पाठ गऱ्यो भने शिव नै बन्छ। अघिल्लो दिन स्नान गरेर हविष्य भोजन गर्नुपर्छ र अर्को दिनदेखि भगवती वाग्वतीमा मन लगाएर सहस्रनामको पाठ गर्नाले बुद्धिमान् पाठकले सम्पूर्ण फल प्राप्त गर्दछन्। हातमा कुश लिएर मनमा राम्रोसित सङ्कल्प गरेर इच्छा लागेको फल पाऊँ भनी वाग्वतीको जलमा स्नान गरेर उहाँको सहस्रनाम पाठ गर्नुपर्छ॥१७६–१८२॥

एकपटक पाठ गऱ्यो भने वर्ष दिनभर हुनगएका सबै पाप नाश हुन्छन्। यसैगरी जति आवृत्ति गऱ्यो, त्यत्ति दशदश गुणाको दरले बढी पाप नाश हुन्छ। पाठ गर्न नसक्नेले सुने मात्र पनि त्यो फल पाउँछ। अरू नदीहरू आएर वाग्वतीसित मिसिएको ठाउँमा स्नान गरे भने दश गुणा बढी फल प्राप्त हुन्छ। विष्णुपदी मिसिएको ठाउँमा स्नान गर्दा सय गुणा फल मिल्दछ। मणिमतीको सङ्गममा स्नान गऱ्यो भने हजार गुणा बढी फल पाउँछ। गङ्गा र वाग्वतीको सङ्गममा स्नान गऱ्यो भने त दशहजार गुणा बढी फल पाइन्छ। त्यस्तै गायत्री, सावित्री र वाग्वती मिलेको ठाउँमा स्नान गरेर पाठ गऱ्यो भने लाख गुणा बढी फल पाइन्छ॥१८३–१८६॥

---

१६. विप्र !, इति न.सं.पु.पाठः।
१७. स्नानादभवफलं लभेत्, इति न.सं.पु.पाठः।
१८. मनोवाञ्छफलं लभेत्, इति न.सं.पु.पाठः।
१९ सङ्गमे पुनः, इति न.सं.पु.पाठः।

सत्सु तेषां समाजे च स्नात्वा हि नियुतं फलम्[२०] । पूर्वजन्मविपाकैश्च विविधरोगसङ्कुलः ॥१८७॥
वाग्वत्यां श्रद्धया पाठात् तत्तद्रोगैर्विमुच्यते । तस्यां स्नातः सकृत्पाठान्मुच्यते कृमिदंशजैः ॥१८८॥
तस्यां स्नानाद् द्विधा पाठात्पक्षिहत्यां व्यपोहति । त्रिवारपाठतः स्नातुर्मृगवधोद्भवन्तथा ॥१८९॥
चतुर्द्धा पाठतः स्नात्वा चाश्वहत्यां व्यपोहति । पञ्चधा पाठतः स्नाता नरहत्यां व्यपोहति ॥१९०॥
षड्धा पाठाद्धि तत्स्नातुः स्त्रीहत्या प्रविनश्यति । सप्तधा बालहत्या च स्नातुस्तस्यां विनश्यति ॥१९१॥
मिथ्योक्तमष्टधा पाठादत्युत्कटं विनश्यति[२१] । नवधा पाठतः स्नातुर्गोहत्याऽपि[२२] विनश्यति ॥१९२॥
दशधा पाठतः स्नातुर्ब्रह्महत्या विनश्यति । स्वर्णस्तेयसुरापानजमगम्यागमोद्भवम् ॥१९३॥
अभक्ष्यभक्षजं पापं स्नाता तस्यां व्यपोहति[२३] । कदाचिद्दैवयोगेन हरावासे गिरौ व्रजन् ॥१९४॥
गायत्र्या किल वाग्वत्याः सावित्र्याः सङ्गमे शुभे[२४] । रमातीर्थे च यः कश्चित् स्तोत्रमेतदुदीरयेत्[२५] ॥१९५॥
कोटिजन्मार्जितं पापं त्यक्त्वा याति परां गतिम् । गिर्यारोहणमात्रेण चाश्वमेधफलं लभेत् ॥१९६॥
सङ्क्रान्त्यां पूर्णिमायाञ्च चतुर्दश्यां तथा कुहौ । द्वादश्याञ्च तृतीयायामष्टम्यां योगसंयुजि[२६] ॥१९७॥
सहस्रनामसम्पाठाद्[२७] दशोत्तरफलं लभेत् । आतुरो मुच्यते रोगैः कुष्ठार्तः कुष्ठकैर्द्रुतम् ॥१९८॥

---

वाग्वतीमा स्नान गरेर पाठ गर्दा पूर्वजन्मको पापले नाना किसिमका रोग लागेका छन् भने पनि ती सबै नाश भएर जान्छन् । वाग्वती नदीमा गई श्रद्धापूर्वक यस सहस्रनामको पाठ गर्नाले रोगीहरू आफूलाई लागेका सम्पूर्ण रोगबाट मुक्त हुनेछन् । वाग्वतीमा एकपटक मात्र स्नान गरे पनि कीराको वधबाट लागेका सम्पूर्ण पापहरू नाश हुन्छन् । वाग्वतीमा स्नान गरेर दुईपटक सहस्रनाम पाठ गऱ्यो भने चराचुरुङ्गी मारेको पाप नष्ट हुन्छ । स्नान गर्ने व्यक्तिले तीनपटक सहस्रनाम पाठ गऱ्यो भने मृग र पशुहरू मारेको पाप नष्ट हुन्छ । वाग्वतीमा स्नान गरेर दुई पटक पाठ गरेमा पक्षीको हत्या गरेर लागेका पा नष्ट हुन्छन् भने स्नानपूर्वक तीन पटक पाठ गर्नाले मृगहरूको वधबाट उत्पन्न पापहरू नासिन्छन् । वाग्वतीमा स्नान गरेर चारपटक सहस्रनाम पढ्यो भने घोडा मारेको पापबाट मुक्त हुन्छ । त्यहाँ स्नान गर्ने व्यक्तिले पाँचपटक सहस्रनाम पढ्यो भने नरहत्याबाट उत्पन्न भएको पाप नष्ट हुन्छ ॥१८७-१९०॥

स्नान गरी छ पटक सहस्रनाम पढ्यो भने स्त्रीहत्यको पाप नाश हुन्छ, वाग्वतीमा स्नान गरेर सातपटक सहस्रनाम पढ्यो भने बालहत्याको अपराध नाश हुन्छ । आठ आवृत्ति गर्दा झूटो बोल्दा हुने ठूलो पाप नाश हुन्छ । स्नान गरेर नौपटक सहस्रनाम पढ्यो भने गोहत्याबाट लाग्ने पाप हटेर जान्छ । स्नान गरेर वाग्वतीको सहस्रनाम दश आवृत्ति पढ्यो भने ब्रह्महत्या नाश हुन्छ । सुन चोरेको, रक्सी खाएको र अगम्यासँग सम्भोग गरेको पापबाट पनि मुक्त हुन्छ । कुनै दिन दैवसंयोगले शिवजीको बसोवास भएको त्यस पर्वतमा पुग्यो भने त्यहाँ गएर स्नान गरी एकपटक पाठ गर्नाले अभक्ष्य खाँदा लाग्ने पापबाट मुक्ति पाउँछ ॥१९३-१९४॥

जहाँ रमातीर्थ छ, सावित्री र वाग्वती नदी छन्, तिनीहरूसित गायत्री नदी मिलेको ठाउँमा स्नन गरेर जसले सहस्रनाम पाठ गर्दछ, त्यो करोडौं जन्ममा गरेको पापबाट मुक्त भई परमगतिमा पुग्छ । शिवजी बसेको त्यस पर्वतमा आरोहण गऱ्यो भने मात्रै पनि मानिसले अश्वमेध यज्ञ गरे बराबरको फल पाउँछ । सङ्क्रान्ति, पूर्णिमा, चतुर्दशी, अमावास्या, द्वादशी, तृतीया, अष्टमी र शुभयोग परेको दिन हजार पटक वाग्वतीसहस्रनाम पाठ गरेमा दशगुणा बढी फल पाउँछ । रोगी छ भने रोगबाट मुक्त हुन्छ । कुष्ठरोग लागेको छ भने तुरुन्तै निको हुन्छ ॥१९५-१९८॥

---

२०. अनासा सङ्गमे स्नात्वा नियुतं फलमाप्नुयात्, इति न.सं.पु.पाठः ।
२१. व्यपोहति, इति न.सं.पु.पाठः ।
२२. स्नातुर्गोवधजः, इति न.सं.पु.पाठः ।
२३. तस्यां स्नाता पाठाद्विसर्जति, इति न.सं.पु.पाठः ।
२४. यत्र चास्ति रमातीर्थं सावित्रीवाग्वत्यास्तथा, इति न.सं.पु.पाठः ।
२५. गायत्र्याः सङ्गमे धीमान् स्नात्वा नाम पठिष्यति, इति न.सं.पु.पाठः ।
२६. योगसंयुगे, इति न.सं.पु.पाठः ।
२७. नाम्नां सहस्रकं पाठाद्, इति न.सं.पु.पाठः ।

ज्वरार्तो मुच्यते रुग्भिः श्रुत्वा नामसहस्रकम्[२८] । प्रौढरोगप्रयुक्तोपि प्राणकण्ठो जनोऽपि वा[२९] ॥१९९॥
नाम्नां सहस्रकं श्रुत्वा परां गतिमवाप्नुयात्[३०] । ग्रहाः प्रशमनं यान्ति क्रूरा नाम्नां प्रपाठतः ॥२००॥
विद्यार्थी लभते विद्यां पुत्रार्थी लभते सुतम् । गुर्विणी सूयते पुत्रं सहस्रनामपाठतः[३१] ॥२०१॥
कूष्माण्डा राक्षसाः क्रूराः भूतप्रेताश्च[३२] डाकिनी । नाम्नां पाठकमालोक्य पलायन्तेऽपमृत्यवः ॥२०२॥
सर्वयज्ञोद्भवपुण्यव्रतानाञ्चैव यत्फलम् । धर्माणामुपवासानां सर्वदानोद्भवं फलम् ॥२०३॥
सर्वतीर्थोद्भवं पुण्यं प्रतिमादर्शनस्य च । तत्पुण्याल्लक्षगुणितं[३३] स्नात्वा च वाग्वतीजले ॥२०४॥
सहस्रनामपाठाद्वै परं मोक्षमवाप्नुयात्[३४] ॥२०५॥

वाग्वत्या सलिले स्वकीयचरणावाप्लाव्य रोगार्दितः[३५]
प्राणैः कण्ठगतोऽपि पामरजनो मुञ्चत्यसूनत्तटे[३६] ।
सोऽन्ते योगसुगम्यमानपदवीं प्राप्नोति हृद्यां शिवां
वाञ्छन्ति त्रिदशा हि तादृशगतिं चान्ये जनाः किं पुनः ॥२०६॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे ब्रह्मनारदसंवादे वाग्वतीसहस्रनामेति नाम
त्र्यशीत्यधिकशततमोऽध्यायः ॥१८३॥

---

सहस्रनामको श्रवण गर्नाले ज्वरो आएको व्यक्ति ज्वरोको रोगबाट मुक्त हुन्छ । प्राण घाँटीमा पुगिसकेको अवस्थामा पनि कुनै कठोर रोग लागेको छ भने वाग्वतीका हजार नाम सुन्यो भने त्यसले परमगति पाउँछ। सहस्रनाम पाठ गर्नाले क्रूर ग्रहहरू पनि शान्त हुन्छन् । सहस्रनामको पाठ गरेर विद्यार्थीले विद्या पाउँछ, छोरा चाहने व्यक्तिले छोरो पाउँछ, गर्भिणीले छोरो पाउँछे । सहस्रनाम पढ्ने व्यक्तिलाई देखेर भूत, राक्षस, प्रेत, डाकिनीहरू सबै भाग्छन्, अकालमृत्यु हुँदैन ॥१९९-२०२॥

सबै यज्ञ गर्दा जुन फल प्राप्त हुन्छ, व्रत गर्दा जुन पुण्य उपलब्ध हुन्छ र दान, धर्म, उपवास, तीर्थयात्रा, देवताको दर्शन गर्दा जुन पुण्य आर्जन हुन्छ त्यसको लाख गुणा बढी पुण्य वाग्वतीको जलमा स्नान गर्नाले प्राप्त हुन्छ । त्यहाँ बसेर वाग्वतीका हजारनाम पढ्नाले परममोक्ष उपलब्ध हुन्छ ॥२०३-२०५॥

घाँटीमा प्राण पुगिसकेपछि पनि वाग्वतीको जलमा खुट्टा चोपेर तिरमा बसी कसैले प्राण त्याग गऱ्यो भने त्यसले मरेपछि योगीहरूले पाउने उत्तम पद पाउँछ । त्यस्तो गति प्राप्त गर्न देवताहरू पनि चाहन्छन् भने अरू मानिसको त के कुरा ? ॥२०६॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डको ब्रह्मनारदसंवादमा वाग्वतीसहस्रनाम समावेश भएको
एकसय त्रियासियौं अध्याय पूरा भयो ।

---

२८. सहस्रनामकम्, इति न.सं.पु.पाठः ।
२९. प्राणकण्ठाश्रितो यदा, इति न.सं.पु.पाठः ।
३०. परात्परां गतिं लभेत्, इति न.सं.पु.पाठः ।
३१. पुत्रमाकर्ण्य नामपाठतः, इति न.सं.पु.पाठः ।
३२. भूताः प्रेताश्च, इति न.सं.पु.पाठः ।
३३. तत्पुण्यं गुणितं लक्षम्, इति न.सं.पु.पाठः ।
३४. मोक्षं परात्परं लभेत्, इति न.सं.पु.पाठः ।
३५. स्वकीयचरणौ संस्पृश्य रोगार्जितः, इति न.सं.पु.पाठः ।
३६. प्राणैः कण्ठगतोऽपि पामरजनो मुञ्चत्यसूंस्तत्तटे , इति न.सं.पु.पाठः ।

# चतुरशीत्यधिकशततमोऽध्यायः

कच्छपासुरवधः

स्कन्द उवाच

ततश्च नारदोऽगस्त्य ! हर्षप्रोत्फुल्लमानसः। केशवस्यान्तिकं प्राप शक्राचलाद् विनिर्गतः ॥१॥
सम्पूज्य कैशविं तत्र[1] भक्त्याऽवोचज्जनार्दनम्। बद्धाञ्चलिः पुरःसृत्य बहुमानपुरःसरम् ॥२॥

नारद उवाच

भगवन् भवरक्षात्मन् शृणु वचो ममाधुना। रक्षितो भवता लोको मेने सर्वश्च सुस्थितः ॥३॥
भवता निहते पापे निष्कण्टकं यथासुखम्। भुञ्जन्ति त्रिदिवे देवा भागधेयं नरा इह ॥४॥
वाग्वतीयं महादेवी गङ्गां यातुं समीहते। तवाऽग्रे यत्[2] पुरा प्रोक्तं भूमन्संस्मर तद्विभो ॥५॥
भिन्ने हि भवता सेतौ ह्रदीभूता च वाग्वती। गङ्गां प्रयास्यतीयञ्च भवद्विमोचिता खलु ॥६॥

स्कन्द उवाच

ओमित्याशु प्रतिश्रुत्य कृष्णस्तत्रैव संसदि। प्रोद्यत्सुदर्शनं धृत्वा सेतुं ययौ खगासनः ॥७॥
चक्रेणाशु हरिः सेतुं बिभेद बहुधा मुहुः। विनिःसृता नदी भूत्वा ह्रदीभूतापि वाग्वती ॥८॥
अद्यापि लभते गङ्गासङ्गमं वाग्वती मुने। सा चोवाह[3] नदीभिश्च ह्यन्याभिः सह वाग्वती ॥९॥
ददर्शाशु तदा कृष्णो ह्रदे कच्छपदानवम्। मुकुटिनं महाकायं लेलिहानमिवाम्बरम् ॥१०॥
व्याचष्ट वचनं कृष्णः प्रद्युम्नाय तदा मुने। प्रददौ सहसा चक्रं रिपुं हन्तुं सुताय च ॥११॥

---

## अध्याय - १८४

### कच्छपासुरको वध

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! त्यसपछि हर्षले अत्यन्त विभोर भएका नारदमुनि शक्राचलबाट ओर्लिएर भगवान् विष्णु बस्नुभएको ठाउँमा आउनुभयो र उहाँले भक्तिपूर्वक भगवान् कृष्णको पूजा गर्नुभयो अनि हात जोडेर अत्यन्त सम्मान गर्दै उहाँले विष्णुलाई भन्न लाग्नुभयो ॥१–२॥

नारदले भन्नुभयो – संसारको रक्षा नै आत्मा भएका हे भगवन् ! हजुर म केही बिन्ती गर्छु, सुन्नुहोस्। हजुरले सम्पूर्ण संसारको रक्षा गर्नुभयो। अहिले सबै स्वस्थ भएका छन् भन्ने मैले ठानेको छु। हजुरले पापी दैत्यलाई मारेपछि निष्कण्टक भएर देवताहरू स्वर्गमा आनन्दसित भोग गरिरहेका छन्। यसैगरी मानिसहरू यस धर्तीमा आफ्नो भाग्यको उपभोग गर्दैछन्। यी वाग्वती गङ्गासित मिल्न चाहन्छिन्। यिनले अघि के बिन्ती गरेकी थिइन्, त्यो हजुरले सम्झनुपर्‍यो। हजुरले त्यो बाँध फोरेर यिनलाई छुट्याइदिनुभयो भने दहका रूपमा रहेकी यी वाग्वती नदी गङ्गामा पुग्न पाउने थिइन् ॥३–६॥

कार्तिक स्वामीले भन्नुभयो – त्यही सभामा हुन्छ भनेर कृष्णले प्रतिज्ञा गर्नुभयो र सुदर्शन चक्र उभ्याएर भगवान् कृष्ण गरुडमा चढेर तुरुन्त त्यो सेतु अर्थात् बाँध भएतिर जानुभयो। भगवान्ले तुरुन्तै त्यस बाँधलाई भत्काउनुभयो। तलाउजस्तै जमेर बसेकी वाग्वती नदी भएर निक्लिइन्। हे अगस्त्य मुनि ! अरू नदीनालाहरूलाई लिएर वाग्वती बगिन् र गङ्गामा गएर मिसिइन्। त्यसैबेला भगवान् कृष्णले मुकुट लगाएको आकाशजत्तिकै अग्लो ठूलो शरीर भएको एउटा कच्छप नाम गरेको दैत्यलाई त्यस दहभित्र देख्नुभयो। हे अगस्त्य मुनि ! त्यसपछि उहाँले त्यस दुष्टलाई मार्नका लागि प्रद्युम्नलाई अह्राउनुभयो र तुरुन्त चक्र दिनुभयो ॥७–११॥

---

१. मान्यैः, इति न.सं.पु.पाठः। २. तेऽग्रे यथा, इति न.सं.पु.पाठः।
३. प्रववाह, इति न.सं.पु.पाठः।

कृष्ण उवाच

भोस्तार्क्ष्य ! तव पक्षेण प्रक्षिप सत्वरं[४] जलम्। अस्य चोत्तरदेशात्त्वं ततः क्षीणबलो भवेत् ॥१२॥
जलाद् बहिर्गतः[५] पापः कूर्मः क्षीणबलो यदा। प्रद्युम्नोऽसौ महावीरश्चक्रेणाशु हनिष्यति ॥१३॥
जहीहि पापमेनं त्वञ्चक्रेणानेन दर्पक। हत्वा दुष्टं ततो रत्नं गृहाणाशु सजीवितम् ॥१४॥
रुद्रेण विहितः पूर्वमस्य मृत्युस्त्वमेव हि। मृत्युस्तपस्य तेनेशं त्वां विना याचितोऽमरात् ॥१५॥

स्कन्द उवाच

इत्युक्त्वा सहसा कृष्णः प्रद्युम्नाय महामनाः। ददौ सुदर्शनं भूयो विराधनिधनाय च ॥१६॥
जग्राह कैशविश्चक्रं भक्त्या प्रणम्य केशवम्। श्रुत्वा पितुर्वचः पथ्यं हर्षप्रवृद्धमानसः ॥१७॥
चिक्षेप पक्षपातेन वैनतेयो जलं तदा। कूर्मस्योत्तरदेशाद्वै यावदस्ति तदन्तिके ॥१८॥
तदुपाश्रित्य कन्दर्पश्चक्रेणाशु जघान तम्। चिच्छेद कन्धरां तस्य क्रन्दमानस्य वै मुहुः ॥१९॥
तस्य कुक्षिगतं रत्नं ग्रहीतुमुत्ससार सः। करं कामस्तदा कूर्मः प्राधर्षयद् भृशं स्मरम् ॥२०॥
जघानाशु मुहुः शक्रो वज्रेण कूर्मरूपिणम्। जयन्तश्च शरैस्तीक्ष्णैर्देवा दिक्पतयस्तथा ॥२१॥
निषिद्धाश्च[६] ततो देवाः कृष्णेन सहसा तदा। मा मामराश्च हन्तव्यो भवद्भिरसुरः क्वचिद् ॥२२॥
कन्दर्पेण भवेन्मृत्युर्विहितश्च[७] पिनाकिना। तेन न प्राप्यते मृत्युरस्मद्भ्यो हि कदाचन ॥२३॥

---

कृष्णले भन्नुभयो – हे गरुड ! तिमी तुरुन्त गएर पखेटाले त्यसको माथिबाट रहेको पानी फ्यालिदेऊ, अनि त्यसको बल घट्छ। त्यसरी एकदम पानी सुख्खा भएर जब त्यो कछुवाको जोर नचल्ने हुन्छ त्यसलाई महावीर यी प्रद्युम्नले चक्र हानेर तुरुन्तै मार्नेछन् ॥१२-१३॥

हे प्रद्युम्न ! अब तिमी पनि यसै चक्रले त्यस पापीलाई मार। त्यसको अलिकति सास हुँदाहुँदै रत्न हात लगाइहाल। अघि महादेवले यसको मृत्युको कारण तिमीलाई नै बनाउनुभएको थियो। यसले तपस्या गरेर महादेवसँग तिमीबाहेक अरू कसैबाट नमरूँ भनेर वर मागेको थियो ॥१४-१५॥

कार्तिक स्वामीले भन्नुभयो – यति भनेर महामना भगवान् कृष्णले त्यो विराध दैत्यलाई मार्नका लागि तुरुन्त सुदर्शन चक्र प्रद्युम्नलाई दिनुभयो। प्रद्युम्नले पनि भक्तिपूर्वक भगवान् कृष्णलाई प्रणाम गरेर उहाँको भनाइ ठीक हो भन्ने ठानी प्रसन्न हुँदै सुदर्शन चक्र लिनुभयो। गरुडले पनि त्यस कच्छप दैत्यको माथितिरबाट आफ्नो पखेटाको वेगले सबै पानी तलतिर हुत्याइदिए। त्यही नजिकमा रहेका प्रद्युम्नले त्यसै थलाको आड लिएर त्यस कच्छप दैत्यलाई चक्रले प्रहार गर्नुभयो। कच्छप कराउँदै थियो, उहाँले सटासट त्यसको गर्धन काटिदिनुभयो ॥१६-१९॥

प्रद्युम्नले जब पेटबाट रत्न झिक्न भनेर के हात लम्काउनुभएको थियो, त्यसले प्रद्युम्नलाई सताउन थाल्यो। अनि इन्द्रले वज्रले, जयन्त आदि अरू देवताहरूले तीखा-तीखा बाणले त्यस कच्छप दैत्यलाई खूबसित प्रहार गरे। त्यो देखेर भगवान् कृष्णले देवताहरूलाई 'तिमीहरू यस राक्षसमाथि कहिल्यै पनि प्रहार नगर' भनेर रोक्नुभयो र 'यसको मरण प्रद्युम्नको हातबाट हुन्छ भनेर शिवजीले तोक्नुभएको छ त्यसैले हामीबाट यो दैत्य कहिल्यै पनि मर्न सक्दैन' भन्नुभयो ॥२०-२३॥

---

४. प्रक्षेपय द्रुतम्, इति न.सं.पु.पाठः।
५. ततः सुनिर्जले, इति न.सं.पु.पाठः।
६. निषेधिताः, इति न.सं.पु.पाठः।
७. अस्य मृत्युश्च कन्दर्पो विहितश्च, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

ततो जघान भूयोऽसौ सुदर्शनेन दर्पकः । प्राणावसानं यावच्च[८] तत्कन्धरां मुहुर्मुहुः ॥२४॥
जग्राह त्वरितं रत्नं सत्सु प्राणेषु[९] दर्पकः । कूर्मो व्यसुः पपातोर्व्यां वाग्वत्याः पश्चिमे तटे ॥२५॥
रत्नमादाय कन्दर्पो ददौ कृष्णाय सत्वरम् । प्रणिपत्य मुहुर्मूर्ध्ना भक्त्या तातं परिक्रमन् ॥२६॥
सरितो मार्गवाहिन्यश्छेदिते कूर्मगह्वरे । अन्याभिरापगाभिः सा चोवाह सह वाग्वती ॥२७॥
स्पष्टायाञ्च रसायां वै प्रभावत्यां समं मुने । वाग्वत्याः सङ्गमं प्रेक्ष्य मुमोद केशवो भृशम् ॥२८॥
सस्नौ कृष्णो मुदा तत्र प्रभावत्याः सुसङ्गमे । दत्त्वा वरं हि तीर्थाय लोकोद्धरणहेतुकम् ॥२९॥
शक्रः सस्नौ जयन्तश्च दिक्पतयश्च यादवाः । सम्मानपूर्वकं सस्नु ऋषयो नारदादयः[१०] ॥३०॥
कृत्वा तीर्थवरं तीर्थं प्रमोदाख्यं घटोद्भव । व्याजहार वचः कृष्णो देवाँस्तान् संसदि ध्रुवम् ॥३१॥

श्रीकृष्ण उवाच

यावत्यः सरितो देवा ! वहन्ति कूर्मप्रान्तरात्[११] । तावत्यस्तीर्थतां यान्तु मम हस्तविमर्शनात्[१२] ॥३२॥
निरागाः स[१३] हतः कूर्मो यस्मात्कामेन देवताः । विधाय तीर्थयात्राञ्च विधेयं दोषमार्जनम्[१४] ॥३३॥
अवतरन्तु देवास्ते पावयितुमिमं द्रुतम्[१५] । मुनयोऽपि ततः कूर्मः पुण्यभाग् सम्भविष्यति[१६] ॥३४॥
ततो लोका वदिष्यन्ति कूर्माद्रिरिति सन्ततम् । स्थास्यति गणपः काले चैतस्याधो दिशि ध्रुवम् ॥३५॥

---

कार्तिक स्वामीले भन्नुभयो – त्यसपछि प्रद्युम्नले फेरि सुदर्शन चक्रले सास मात्र बाँकी रहने गरी घाँटीमा बारम्बार प्रहार गर्नुभयो र कच्छपासुरले प्राण नछोड्दै तुरुन्तै प्रद्युम्नले त्यो रत्न झिकेर लिनुभयो । त्यसपछि त्यो कच्छप दैत्य निर्जीव भएर वाग्वतीको पश्चिम किनारामा पछारियो । प्रद्युम्नले भगवान्लाई भक्तिसाथ शिरले प्रणाम तथा परिक्रमासमेत गरी त्यो रत्न अर्पण गर्नुभयो । कच्छप दैत्यलाई मारेर पहरो फोरेपछि नदीनालाहरू सबै आ–आफ्ना बाटो लागे । वाग्वती पनि अरू नदीलाई साथमा लिएर बग्न थालिन् ॥२४–२७॥

हे अगस्त्य मुनि ! त्यसबेला पृथ्वी स्वच्छ र स्पष्ट देखिन्थिन् । प्रभावती र वाग्वती सङ्गम देखेर भगवान् कृष्ण साह्रै खुसी हुनुभयो । प्रभावतीको सङ्गममा उहाँले स्नान गर्नुभयो । लोकको उद्धार हुन्छ भनेर उहाँले त्यस तीर्थलाई वर पनि दिनुभयो । इन्द्रले पनि त्यसै तीथर्मा स्नान गरे । जयन्तले पनि नुहाए, अरू दिक्पाल, यादव र नारद तथा अन्य ऋषिमुनिहरूले पनि त्यहाँ बडो सम्मानका साथ स्नान गरे । हे अगस्त्य मुनि ! त्यस समयमा त्यहाँ प्रमोद नाम गरेको उत्तम तीर्थ तयार भयो । भगवान् कृष्णले त्यस सभामा देवताहरूलाई भन्नुभयो ॥२८–३१॥

कृष्णले भन्नुभयो – हे देवता हो ! मेरो हातको स्पर्श भएको हुँदा यो कछुवाको अन्तर–अन्तरबाट जति पनि पानी चुहिन्छ ती सबै स्थानहरू तीर्थ बन्नेछन् । जुन ठाउँमा प्रद्युम्नले निरपराध कछुवालाई मारे त्यसै ठाउँमा हामीले तीर्थयात्रा गरेर प्रायश्चित्त गर्नुपर्छ । अब अरू देवता, ऋषिमुनिहरूले पनि यसलाई पवित्र तुल्याउन यसमाथि आरोहण गर्नुपर्छ । यो कछुवा पवित्र बन्नेछ । पछि गएर यसलाई मानिसहरूले कूर्माचल पर्वत भन्नेछन् । यसको तल्लो भागमा गणेशजी गएर बस्नुहुनेछ ॥३५॥

---

८. प्राणशेषं हि यावत्तम्, इति न.सं.पु.पाठः ।
९. यावत्प्राणं हि, इति न.सं.पु.पाठः ।
१०. नारद ऋषयः सस्नुर्बहुमानपुरःसरम्, इति न.सं.पु.पाठः ।
११. यावन्तः स्रवितास्तोयाः कूर्मस्य प्रान्तरात्सुराः, इति न.सं.पु.पाठः ।
१२. हस्तस्पृशात्सदा, इति न.सं.पु.पाठः ।
१३. अनागसः, इति न.सं.पु.पाठः ।
१४. तीर्थयात्रां गतो न्यायः कर्त्तव्यमत्र दर्पक, इति न.सं.पु.पाठः ।
१५. अवतरन्तु देवा वै चारुह्यैनं पवित्रितुम्, इति न.सं.पु.पाठः ।
१६. ततः पवित्रतां याति कूर्मोऽयं मुनयस्तथा, इति न.सं.पु.पाठः ।

एकदन्तो महादेवः सर्वसिद्धिप्रदायकः । नित्यं विराजते तत्र सर्वलोकैः प्रपूजितः ॥३६॥
वत्स्याम्यहं तथा चात्र लोकोद्धरणहेतुकः । दास्यामि पूजकेभ्योऽहं सर्वेप्सितफलं वरम् ॥३७॥
अत्रैवानन्तरूपेण स्थास्येऽहं सर्वदा वृषन् । सर्वपर्वसु यत्नेन नागलोकैः प्रसेवितः[१७] ॥३८॥
अत्र संस्नाति यो[१८] मर्त्यो ज्ञानतोऽज्ञानतोऽपि वा । प्रक्षाल्य[१९] तस्य पङ्कानि चोद्धरिष्याम्यहञ्च तम् ॥३९॥
वाग्वत्याश्च प्रभावत्याः सङ्गमे तीर्थकेऽमराः । मद्दिने स्नाति यो भक्त्या चोद्धरिष्याम्यहं ध्रुवम् ॥४०॥
मत्तीर्थे स्नातको यो हि विशेषेण तिथौ मम । तस्य पापानि चोत्सृज्य चोद्धरिष्यामि सान्वयम् ॥४१॥

स्कन्द उवाच

आकर्ण्य वचनं विष्णोस्तदा देवर्षयः समम् । स्नात्वारुह्याशु कूर्माङ्गमवतर्त्तुं प्रचक्रिरे ॥४२॥
प्रचक्रमे ततः शक्रः कृष्णेन सह साम्प्रतम् । कर्त्तुं नैपालतीर्थेषु जलाप्लावं मुनीश्वर ॥४३॥
ऋषयो यादवा देवाः सिद्धर्षिभिः समं पुनः । स्नानं नैपालतीर्थेषु[२०] प्रचक्रिरे हि सर्वशः ॥४४॥
अद्यापि च न मुञ्चन्ति तन्नेपालं सुरर्षयः । तीर्थेषु स्नान्ति तेऽजस्रं समर्चयन्ति शङ्करम् ॥४५॥
योगिनो योगतस्तत्र विमुच्यार्याः ! कलेवरम् । योनियन्त्राणि सन्त्यज्य प्रयान्ति परमं पदम् ॥४६॥

अध्यायमेतच्छृणुयाद् य आर्यो[२१] नश्यन्ति तस्याखिलशत्रवस्ते[२२] ।
माहात्म्यमाकर्ण्य प्रमोदजातं[२३] लभेत तत्राप्लवनोद्भवं सः ॥४७॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे प्रद्युम्नोत्तरे कच्छपासुरवधो नाम
चतुरशीत्यधिकशततमोऽध्यायः ॥१८४॥

---

सम्पूर्ण सिद्धि दिने एकदन्त गणेश त्यहाँ सधैँ गएर बस्नुहुनेछ । सबै मानिसले उहाँको पूजा गर्नेछन् ॥३६॥ संसारको उद्धारका लागि म पनि यहाँ बस्नेछु र पूजा गर्ने सबैलाई उनीहरूले चाहेको वर दिनेछु । हे इन्द्र ! म पनि अनन्तको रूप लिएर यसै ठाउँमा बस्नेछु । सबै पर्वरुमा नागहरूले मेरो सेवा गर्नेछन् । जुन मानिसले जानेर होस् अथवा नजानेर होस्, यहाँ स्नान गऱ्यो भने सबै पाप पखालेर म त्यसको उद्धार गर्नेछु । हे देवता हो ! वाग्वती र प्रभावती मिलेको यस तीर्थमा द्वादशीका दिन भक्तिपूर्वक जसले स्नान गर्छ त्यसको म उद्धार गर्नेछु । मेरो तीर्थमा विशेष गरी मेरो तिथि द्वादशीका दिन जसले स्नान गर्छ त्यसका सबै पाप पखालेर म उसलाई कुलैसहित उद्धार गर्नेछु ॥३६–४१॥

कार्तिक स्वामीले भन्नुभयो – भगवान् कृष्णको यो कुरा सुनेर देवता, ऋषिमुनि सबैले त्यस तीर्थमा स्नान गरे र कछुवाको अङ्गमा चढेर ओर्लन थाले । अनि इन्द्रले पनि कृष्णका साथमा लागेर नेपालका तीर्थहरूमा स्नान गर्न थाले । त्यस्तैसबै देवता, ऋषिमुनि, सप्तर्षि र यादवहरूले पनि नेपालका तीर्थमा जताततै डुबुल्की मार्न थाले । देवर्षिहरूले आज पनि त्यो नेपाललाई छोडेका छैनन् । तिनीहरू तीर्थमा स्नान गर्छन् र सधैँ भगवान् शङ्करको पूजा गर्छन् । पूज्य योगीहरू त्यहाँ योगाभ्यास गरी चोला बदलेर जन्म र मृत्युको चक्रमा घुमिरहनुपर्ने स्थितिलाई त्यागी परमपदमा पुग्छन् ॥४२–४६॥

जसले यो अध्याय श्रवण गर्नेछ त्यसका सबै शत्रुहरू नष्ट हुनेछन् । प्रमोदतीर्थको माहात्म्यले युक्त भएको यो अध्याय सुन्ने व्यक्तिले त्यही तीर्थमा डुबुल्की मारेसरहको पुण्य पाउनेछ ॥४७॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डको प्रद्युम्नोत्तरमा कच्छपासुरवधनामक एकसय चौरासियौं अध्याय पूरा भयो ।

---

१७. प्रसेव्यते, इति न.सं.पु.पाठः ।
१८. यश्चात्र स्नायते, इति न.सं.पु.पाठः ।
१९. विमुच्य, इति न.सं.पु.पाठः ।
२०. नैपालेषु च तीर्थेषु, इति न.सं.पु.पाठः ।
२१. ...च्छृणुयान्नरार्यो, इति न.सं.पु.पाठः ।
२२. तस्यैवमरातयो वै, इति न.सं.पु.पाठः ।
२३. श्रुत्वा प्रमोदस्य महत्त्वपूर्णम्, इति न.सं.पु.पाठः ।

# पञ्चाशीत्यधिकशततमोऽध्यायः

## श्रीकृष्णस्य तीर्थयात्रा

नारद उवाच

माहात्म्यञ्चैव तीर्थानां श्रोतुकामा वयं विभो। तीर्थानां नामधेयानि तीर्थभावं तथा पुनः ॥१॥
एतानि श्रोतुमिच्छामो नेपालसम्भवानि च। येन सिद्धिं च प्राप्स्यामो[1] ज्ञात्वा तेषु जलाप्लवात् ॥२॥

स्कन्द उवाच

इत्याकर्ण्य वचः कृष्णो नारदस्य च धीमतः। स्वीकारं कृतवांस्तत्र हर्षयन्मुनिदेवताः ॥३॥
आरुरोह हरिस्ताक्ष्र्यमारोहयँश्च[2] दर्पकम्। आदिदेशामरान् सिद्धान् स्यन्दनारोहणाय च[3] ॥४॥
स्नात्वा प्रमोदतीर्थे च ताक्ष्र्यासनोऽमरैः समम्। माहेश्वरीजले स्नातुं ययौ स यादवैः समम् ॥५॥
तस्यां स्नात्वा मुदा युक्तो व्याचष्ट वचनं हरिः। श्रावयंस्त्रिदशान् सिद्धान् तीर्थमाहात्म्यमादरात्[4] ॥६॥

कृष्ण उवाच

सार्द्धकोटित्रयस्यात्र समुद्‌भवः समन्ततः[5]। तेषु महत्त्वपूर्णानां[6] वच्मि नामानि तच्छृणु ॥७॥
भक्त्यादौ प्रणमेत्तीर्थं गङ्गाभावेन चेतसा। ततः स्नायाच्च तत्रैव गङ्गाभावेन पूर्ववत्[7] ॥८॥
माहेश्वरीजले स्नातुः पुनर्जन्म न विद्यते। ईषे सितनवस्यां स भुक्तिं मुक्तिं समाप्नुयात्[8] ॥९॥
अस्मिन् भैरवतीर्थे च स्नातव्यं मुनयोः सुराः[9]। चैत्रस्य पूर्णिमायाञ्च गवां लक्षफलं भवेत् ॥१०॥

---

## अध्याय – १८५

### श्रीकृष्णको तीर्थयात्रा

नारदजीले भन्नुभयो – हे प्रभु ! हामी तीर्थहरूको माहात्म्य सुन्न चाहन्छौं, तीर्थको नाम, तीर्थभाव र नेपालमा पैदा भएका तीर्थहरूका बारेमा जान्ने हामीलाई इच्छा छ। यी तीर्थहरूमा स्नान गरेर हामी सिद्धि प्राप्त गर्न चाहन्छौं ॥१–२॥

कार्तिक स्वामीले भन्नुभयो – बुद्धिमान् नारदको यो कुरा सुनेर भगवान् कृष्णले मुनि र देवताहरूलाई खुसी तुल्याउँदै यो कुरा स्वीकार गर्नुभयो। त्यसपछि भगवान् विष्णु गरुडमा चढ्नुभयो र प्रद्युम्नलाई पनि गरुडमा राख्नुभयो। देवता र सिद्धहरूलाई पनि रथमा चढ्न आदेश दिनुभयो। गरुडमाथि चढ्ने भगवान् कृष्णले सर्वप्रथम देवताहरूको साथमा रहेर प्रमोदतीर्थमा स्नान गर्नुभयो। त्यसपछि यादवहरूलाई साथमा लिएर उहाँ माहेश्वरीको जलमा स्नान गर्न जानुभयो। त्यहाँ स्नान गरेपछि प्रसन्न भएका विष्णुले देवता र सिद्धहरूलाई सुनाउँदै श्रद्धाका साथ तीर्थको माहात्म्य बताउनुभयो ॥३–६॥

कृष्णले भन्नुभयो – यहाँ साढे तीन करोड तीर्थहरू उत्पन्न भएका छन्। तीमध्ये ठूला–ठूला तीर्थहरूको नाम बताउँछु, सुन्नुहोस्। सबैभन्दा पहिले चित्तमा गङ्गाको भावना लिएर तीर्थलाई भक्तिपूर्वक नमस्कार गर्नुपर्छ। त्यसपछि धीर व्यक्तिले सम्पूर्ण भावले तीर्थमा स्नान गर्नुपर्छ। माहेश्वरीतीर्थमा आश्विनशुक्ल नवमीका दिन स्नान गर्ने व्यक्तिले पुनर्जन्म लिनुपर्दैन। उसले भुक्ति तथा मुक्तिको फल पाउँछ। हे देवता हो ! चैत्रपूर्णिमाको दिन यो भैरवतीर्थमा स्नान गर्नुपर्छ। त्यसो गर्‍यो भने लाखौं गाई दान गरेको फल प्राप्त हुन्छ ॥७–१०॥

---

१. लभिष्यामः, इति न.सं.पु.पाठः।
२. हरिस्ताक्ष्र्यमारोहयति, इति न.सं.पु.पाठः।
३. स्थान्यारोहणाय च, इति न.सं.पु.पाठः।
४. तीर्थमाहात्म्यमाद्रितः, इति न.सं.पु.पाठः।
५. तिस्रः कोट्यर्द्धकोटीनां प्रभवोऽद्य समन्ततः, इति न.सं.पु.पाठः।
६. गरिष्ठानां यथा तेषाम्, इति न.सं.पु.पाठः।
७. ततश्च स्नायते धीरैः सर्वभावन्तयैव च, इति न.सं.पु.पाठः।
८. भुक्तिमुक्तिफलं लभेत्, इति न.सं.पु.पाठः।
९. त्रिदशा मुने, इति न.सं.पु.पाठः।

ब्रह्मपद्याञ्च वै तस्यां स्नातव्यं त्रिदशाः पुनः। श्रावणीपूर्णिमायाञ्च गोसहस्रफलं भवेत् ॥११॥
शिप्रायाञ्च सुराः स्नान्तु लक्षगोदानजं फलम्[१०]। कृष्णाष्टम्यां मधोर्भौमे लक्षगोदानजं फलम्[११] ॥१२॥
हिमस्रवामहानद्यामेतस्यां स्नान्तु हे सुराः[१२]। शुक्लाष्टम्यां मधोः सौम्ये शतगोदानजं फलम्[१३] ॥१३॥
रेविकातीर्थ एतस्मिन् स्नायतां हे मुनीश्वराः[१४]। राधकृष्णद्वितीयायां लक्षगोदानजं फलम्[१५] ॥१४॥
स्नानं कुर्वन्तु पम्पायां[१६] देवर्षयः सुराः पुनः। ज्येष्ठे सिततृतीयायां कपिलाशतजं फलम् ॥१५॥
नीलकण्ठे महाकुण्डे स्नानाच्च[१७] विबुधा पुनः। न पुनर्जायते योनौ स्नाता विकिल्वषः पुमान् ॥१६॥
श्रावणीपूर्णिमायां यश्चात्र[१८] कुण्डेषु चाप्लवेत्। सर्वैनोभिर्विनिर्मुक्तः स याति परमाङ्गतिम् ॥१७॥
सप्तकुण्डेषु चैतेषु भक्त्या स्नानेन हे सुराः[१९]। ज्येष्ठे सिततृतीयायां स्नाताप्नोति परात्परम् ॥१८॥
रुद्रपद्याञ्चतुर्दश्यां तपसि स्नयतां सुराः। स्नानात् गोकोटिदानस्य फलं स्नाता समाप्नुयात्[२०] ॥१९॥
दुर्गाख्यायाञ्च कौशिक्यां भक्त्या सुस्नायतां सुराः। स्नातुर्महानवम्याञ्च कोटिगुणं फलं भवेत्[२१] ॥२०॥
देवा रत्नस्रवायां हि चास्याञ्च स्नायतां फलम्। रत्नतुलाशतोद्भूतं स्नानेन स्यादीषे कुहौ[२२] ॥२१॥

---

हे देवता हो ! यसपछि श्रावणपूर्णिमाको दिन यो ब्रह्मपदी तीर्थमा स्नान गर्नुपर्छ। यहाँ स्नान गर्दा हजार गाई दान गरेको फल प्राप्त हुन्छ। त्यसपछि यो सिप्रा नदीमा स्नान गर्नुपर्छ। चैत्रकृष्ण अष्टमी र चैत्रका मङ्गलबारका दिन यहाँ स्नान गर्दा एक लाख गाई दान गरेको फल प्राप्त हुन्छ। हे देवता हो ! यो हिमस्रवा महानदीमा चैत्रशुक्ल अष्टमीका दिन स्नान गर। यसो गर्दा सयवटा गाई दान गरेको फल पाइन्छ। हे मुनीश्वर हो ! यो रेविका नाम गरेको तीर्थमा स्नान गर। वैशाखकृष्ण द्वितीयाका दिन यहाँ स्नान गर्दा एक लाख गाई दान गरेको फल प्राप्त हुन्छ ॥११-१४॥

हे देवता हो ! हे देवर्षि हो ! यो पम्पातीर्थ हो, यहाँ स्नान गर। ज्येष्ठशुक्ल तृतीयाको दिन यस तीर्थमा स्नान गर्दा सयवटा कैली गाई दान गरेको फल प्राप्त हुन्छ। अनि यो नीलकण्ठ महाकुण्ड हो, यसमा स्नान गर। यहाँ स्नान गर्दा फेरि संसारमा जन्म लिनुपर्दैन। सबै पापबाट स्नान गर्ने पुरुष मुक्त हुन्छ। जसले श्रावणपूर्णिमाको दिन यस कुण्डमा स्नान गर्छ त्यो व्यक्ति सम्पूर्ण पापबाट मुक्त भएर परमगतिमा पुग्छ। हे देवता हो ! यी सातवटा कुण्ड छन्। यी कुण्डमा भक्तिपूर्वक स्नान गर। ज्येष्ठशुक्ल तृतीयाको दिन यी सातवटा कुण्डमा स्नान गर्ने व्यक्ति परमपदमा पुग्छ ॥१५-१८॥

हे देवता हो ! यी रुद्रपदी नदी हुन्, यहाँ माघमहिनाको चतुर्दशी तिथिका दिन स्नान गर। त्यसदिन यहाँ स्नान गर्ने व्यक्तिले करोडौँ गाई दान गरेको फल प्राप्त गर्छ। हे देवता हो ! यी दुर्गा नाम गरेकी कोशी नदी हुन्। यिनमा भक्तिपूर्वक स्नान गर। महानवमीका दिन यस नदीमा स्नान गर्ने व्यक्तिले अरू तीर्थमा स्नान गरेभन्दा करोडौँ गुणा बढी फल पाउँछ। हे देवता हो ! यी रत्नस्रवा नदी हुन्। यिनमा स्नान गर। आश्विनमहिनाको अमावास्या तिथिका दिन यहाँ स्नान गर्ने व्यक्तिले सयवटा रत्न र तुलादान गरेबराबरको फल पाउँछ ॥१९-२१॥

---

१०. सिप्रवायां ततो देवाश्चैतस्यां स्नायतां खलु, इति न.सं.पु.पाठः। ११. कृष्णाष्टम्यां मधोर्भौमे गवां लक्षफलं भवेत्, इति न.सं.पु.पाठः।
१२. स्नायतां सुराः, इति न.सं.पु.पाठः।
१३. गवां शतफलं लभेत्, इति न.सं.पु.पाठः।
१४. स्नाहि पुत्र मुनीश्वराः, इति न.सं.पु.पाठः।
१५. गवां लक्षफलं लभेत्, इति न.सं.पु.पाठः।
१६. पम्पायां स्नायतामस्याम्, इति न.सं.पु.पाठः।
१७. स्नायताम्, इति न.सं.पु.पाठः।
१८. यो यश्च, इति न.सं.पु.पाठः।
१९. च स्नायताम्, इति न.सं.पु.पाठः।
२०. रुद्रपद्याञ्चतुर्दश्यां तापसी चात्र देवताः। स्नानात् गोकोटिदानस्य फलं स्नाता समाप्नुयात्, इति न.सं.पु.पाठः।
२१. स्नाता महानवम्याञ्च ह्यन्यत्कोटिगुणं फलम्, इति न.सं.पु.पाठः। २२. रत्नतुलाशतं सर्वं स्नाताप्नुयादिषे कुहौ, इति न.सं.पु.पाठः।

सूर्यदीप्त्यां स्मर स्नाहि सप्तम्यां सूर्यवासरे[२३]। मार्गसिते च सङ्क्रान्त्यां स्नातुः पुत्र ! फलं शृणु ॥२२॥
पीडयन्ति ग्रहा नैवं[२४] विषमेऽपि स्थिता भृशम्। सूर्यपर्वायुतं लब्ध्वा फलं सूर्यं[२५] व्रजेत् परम् ॥२३॥
मणिचूडाचलं पश्य स्नाहि मणिह्रदे स्मर। प्रणमतु च[२६] वज्राख्यां दण्डवत्पातयन्तनुम् ॥२४॥
मणिचूडाचलारोहात्[२७] सर्वपापैः प्रमुच्यसे। स्नात्वा पश्यति यो देवीं योगगङ्गाजले शृणु ॥२५॥
गर्भवासं परित्यज्य स याति परमां गतिम्। सर्वजन्मार्जितैः पापैर्विमुक्तस्तत्क्षणात्स्मर ॥२६॥
सप्तजन्मार्जितानाञ्च सुकृतानां प्रभावतः। अत्र प्राप्नोति यश्चार्य चादिशक्तिं स पश्यति ॥२७॥
रत्नह्रदे सुत स्नाहि स्नात्वा यः पश्यतीश्वरम्। स प्राप्नुयात् महापुण्यं ततो गच्छेच्च शाङ्करम्[२८] ॥२८॥
एतच्छैलोद्भवास्वार्यो[२९] नवधारासु दर्पक। श्रावणीपूर्णिमायाञ्च स्नात्वा गोलक्षजं फलम् ॥२९॥
भद्रतीर्थे सुत ! स्नाहि चतुर्दश्यां हि चैत्रके। शतगोदानजं पुण्यं स्नानादत्र समाप्नुयात्[३०] ॥३०॥
उग्रतीर्थे पुनः स्नाहि वैशाखीपूर्णिमादिने। लक्षगोदानजं पुण्यं प्राप्य रौद्रं व्रजेत् सुधीः[३१] ॥३१॥

---

हे प्रद्युम्न ! यो सूर्यदीप्ति तीर्थ हो, यहाँ स्नान गर। आइतबार परेको सप्तमी तिथि अथवा मार्गशुक्ल सङ्क्रान्तिका दिन स्नान गर्दा के फल प्राप्त हुन्छ, हे छोरा ! त्यो कुरा सुन। यहाँ स्नान गर्ने व्यक्तिलाई विषम अवस्थामा पनि ग्रहहरूले पीडा दिँदैनन्। हजारौं सूर्यग्रहणका बेला स्नान गरेको फल प्राप्त गरेर त्यो उत्तम सूर्यलोकमा जान्छ ॥२२-२३॥

हे प्रद्युम्न ! हेर, यो मणिचूड पर्वत हो। यसको मणिदहमा स्नान गर। शरीरलाई झुकाएर दण्डवत् गर्दै त्यहाँ वज्रयोगिनी देवीलाई प्रणाम गर। यस पहाडमा आरोहण गर्नाले सम्पूर्ण पापबाट मुक्ति मिल्छ, योगगङ्गाको जलमा स्नान गर्दा प्राप्त हुने फल सुन। त्यहाँ स्नान गर्ने व्यक्तिले गर्भमा बस्नुपर्ने बाध्यतालाई छोडेर परमगति प्राप्त गर्छ। हे प्रद्युम्न ! तुरुन्तै त्यो व्यक्ति सम्पूर्ण जन्ममा गरेका पापबाट मुक्त हुन्छ। सात जन्मसम्म गरेका पुण्यको प्रभावले मात्रै मानिस यहाँ आइपुग्छ र आदिशक्तिको दर्शन गर्न पाउँछ ॥२४-२७॥

हे छोरा ! अब यो रत्नदहमा स्नान गर। जसले यस दहमा स्नान गरेर महादेवको दर्शन गर्छ त्यसले सय भार रत्न दान गरेको पुण्य पाउँछ र त्यो शिवलोकमा जान्छ। हे प्रद्युम्न ! यस पर्वतबाट निस्किएका नौ धारामा श्रावणपूर्णिमाको दिन स्नान गर्ने व्यक्तिले लाख गाई दान गरेको फल पाउँछ। हे छोरा ! यस भद्रतीर्थमा स्नान गर। चैत्रमहिनाको चतुर्दशीका दिन विधिपूर्वक जसले यस तीर्थमा स्नान गर्छ त्यसले सयवटा गाई दान गरेको फल पाउँछ ॥३०॥ यो उग्रतीर्थ हो, यसमा स्नान गर। वैशाखपूर्णिमाको दिन यस तीर्थमा स्नान गर्ने व्यक्तिले एक लाख गाई दान गरेको फल प्राप्त गर्छ र त्यो बुद्धिमान् व्यक्ति रुद्रलोकमा जान्छ ॥२८-३१॥

---

२३. सप्तम्योक्तरवौ हि वा, इति न.सं.पु.पाठः।
२४. तं पीडन्ति ग्रहा नैवम्, इति न.सं.पु.पाठः।
२५. प्राप्य सूर्यलोके, इति न.सं.पु.पाठः।
२६. प्रणम्याञ्च, इति न.सं.पु.पाठः।
२७. गिरिमारोहणादेनम्, इति न.सं.पु.पाठः।
२८. रत्नभारशतं पुण्यं प्राप्य गच्छति शाङ्करम्, इति न.सं.पु.पाठः।
२९. अस्मिन् शैलोद्भवास्वार्यः, इति न.सं.पु.पाठः।
३०. स्नायते विधिना योऽत्र गवां शतफलं लभेत्, इति न.सं.पु.पाठः।
३१. गवां लक्षफलं प्राप्य रुद्रलोकं व्रजेत् सुधीः, इति न.सं.पु.पाठः।

शचीतीर्थे सुत ! स्नाहि पूर्णिमायां शुचेः पुनः । शताश्वमेधजं प्राप्य पदं शाक्रं[३२] स गच्छति ॥३२॥
गन्धर्वे स्नाहि तीर्थे त्वं तपसः पूर्णिमादिने । स्नात्वा लिङ्गार्चनं कृत्वा लक्षगोदानजं फलम्[३३] ॥३३॥
विश्वह्रदे सुत स्नाहि ह्याषाढीपूर्णिमादिने । स्नायते विधिवद्धीरः कोटियज्ञफलं लभेत् ॥३४॥
चित्रह्रदे सुत स्नाहि फाल्गुणीपूर्णिमादिने । स्नाता पश्यति मन्मूर्त्तिमार्यान्तस्य फलं शृणु ॥३५॥
गिरेरारोहणात्सद्यः स निःष्पापो भवेत्स्मर । स्नाता तत्र महापापैर्मुच्यते पातकैरपि ॥३६॥
आरुह्य गिरिराजेन्द्रं स्नातकोऽस्मिन् ह्रदे शिवाम् । योऽर्चति सतनुः शैवं निःष्पापो याति तत्पदम् ॥३७॥
कालतीर्थे पुनः स्नाहि कासुन्दाद्रिं सुलङ्घयन् । एनां पश्य भवानीं त्वं लिङ्गं कालेश्वरं स्मर ॥३८॥
कालतीर्थे जले स्नात्वा लिङ्गं पश्यति यः शिवाम् । माघासिते चतुर्दश्यां याति सविग्रहः परम् ॥३९॥
ब्रह्मतीर्थे स्मर ! स्नात्वा नृत्येश्वरं प्रपूजय । गवां कोटिफलं लब्ध्वा व्रजेत्परं यतः कुहौ ॥४०॥
वाग्वत्यां घर्घरायोगे सङ्क्रान्त्यां फाल्गुनस्य च । वैतरण्यान्तथा तथा स्नानात् शतगोदानजं फलम्[३४] ॥४१॥
स्नाहि सरस्वतीकुण्डे पश्य मनःश्रियं स्मर । स्नानात् गोलक्षजं पुण्यं[३५] मकरस्थे दिवाकरे ॥४२॥
प्रभातीर्थे स्मर ! स्नाहि चैत्रके पूर्णिमादिने । स्नाता गवां फलं लक्षं प्राप्य याति शिवालयम् ॥४३॥
व्याघ्रतीर्थे हि यः स्नात्वा गोपालेशं प्रश्यति । भाद्रस्य पूर्णिमायां स लभेत कोटिगोफलम्[३६] ॥४४॥

---

हे छोरा ! शचीतीर्थमा स्नान गर । पूर्णिमाको दिन पवित्र भएर यसमा स्नान गर्ने व्यक्ति सयवटा अश्वमेध यज्ञ गरेको फल प्राप्त गरेर इन्द्रलोकमा जान पाउँछ । यो गन्धर्वतीर्थ हो । यसमा स्नान गर । माघपूर्णिमाको दिन यहाँ स्नान गरेर शिवलिङ्गको पूजा गर्ने व्यक्तिले लाखवटा गाई दान गरेको फल पाउँछ । हे छोरा ! यो विश्वह्रद नाम गरेको तीर्थमा स्नान गर । आषाढपूर्णिमाको दिन विधिपूर्वक यस तीर्थमा स्नान गर्ने मान्छेले करोडौँ यज्ञ गरेको फल पाउँछ ॥३२–३४॥

हे छोरा ! यो चित्रदहमा स्नान गर । फाल्गुन महिनाको पूर्णिमाको दिन यहाँ स्नान गरेर जसले मेरो मूर्तिको दर्शन गर्छ त्यसको फल सुन । हे प्रद्युम्न ! यस पर्वतमा आरोहण गर्ने बित्तिकै त्यो व्यक्ति पापरहित हुन्छ । यहाँ स्नान गर्‍यो भने ठूला–ठूला पाप र महापापबाट मुक्त हुन्छ । यस पर्वतमा आरोहण गरेर यहाँ रहेको तलाउमा स्नान गरी जसले भगवतीको पूजा गर्छ त्यो पापरहित भएर शरीरैसित उत्तम शिवलोकमा जान पाउँछ ॥३५–३७॥

हे प्रद्युम्न ! अब कासुन्द पर्वतमा चढेर कालतीर्थमा स्नान गर । यी भगवती देवी र कालेश्वर भगवान्‌को दर्शन गर । कालतीर्थको जलमा स्नान गरेर जसले माघकृष्ण चतुर्दशिका दिन भगवती र शिवलिङ्गको दर्शन गर्छ त्यो शरीरैसित परमपदमा पुग्छ । हे प्रद्युम्न ! ब्रह्मतीर्थमा स्नान गरेर नृत्येश्वर भगवान्‌को पूजा गर । अमावास्याका दिन त्यसो गर्ने व्यक्तिले करोडौँ गाई दान गरेको फल प्राप्त गरी परमपदमा जान पाउँछ ॥३८–४०॥

फाल्गुन महिनाको सङ्क्रान्तिका दिन वाग्वती र घर्घरा नदीको सङ्गम तथा वैतरणीनदीमा स्नान गर्‍यो भने सय गाई दान गरेको फल प्राप्त हुन्छ । सरस्वती कुण्डमा स्नान गरेर हे प्रद्युम्न ! मनश्री देवीको दर्शन गर । मकरराशिमा सूर्य पुगेको बेला त्यहाँ स्नान गर्‍यो भने एक लाख गाई दान गरेको फल प्राप्त हुन्छ । हे कामदेव ! यस प्रभातीर्थमा स्नान गर । चैत्रपूर्णिमाको दिन यस तीर्थमा स्नान गर्ने व्यक्तिले अरू तीर्थमा भन्दा लाख गुणा बढी फल प्राप्त गरेर शिवलोक जान पाउँछ । जसले यस व्याघ्रतीर्थमा भाद्र महिनाको पूर्णिमाको दिन स्नान गरेर गोपालेश्वर भगवान्‌को दर्शन गर्छ त्यसले करोडौँ गाई दान गरेको फल प्राप्त गर्छ ॥४१–४४॥

---

३२. शक्रलोकम्, इति न.सं.पु.पाठः ।
३३. स्नात्वा पूजति लिङ्गं यो गवां लक्षफलं लभेत्, इति न.सं.पु.पाठः ।
३४. चास्यां गवां शतफलं लभेत्, इति न.सं.पु.पाठः ।
३५. लभेत्फलं गवां लक्षम्, इति न.सं.पु.पाठः ।
३६. गवां कोटिफलं लभेत्, इति न.सं.पु.पाठः ।

मत्तीर्थे दर्पक ! स्नाहि संक्रान्त्यां मत्तिथौ तपे। स्नात्वा पश्यति मां भक्त्या तस्य पुण्यफलं शृणु ॥४५॥
न पुनर्जायते योनौ मरणं नास्ति चापरम्। कोटिगोमेधजं पुण्यं प्राप्य याति स मत्पदम्[३७] ॥४६॥
कनखले स्मर ! स्नाहि पौषकृष्णाष्टमीदिने। लक्षगोदानजं पुण्यं रुद्रलोकश्च स्नानतः[३८] ॥४७॥
नन्दितीर्थे पुनः स्नाहि नन्दीश्वरं विलोकय[३९]। तपोऽसितचतुर्दश्यां लक्षगोदानजं फलम्[४०] ॥४८॥
पद्मतीर्थे पुनः स्नाहि शुक्लाष्टम्यान्तपस्तिथौ। लक्षगोदानजं पुण्यं धामप्राप्तिश्च स्नानतः[४१] ॥४९॥
असिताख्ये पुनः स्नाहि पौषसिताष्टमीतिथौ। स्नात्वा प्रेक्ष्यैश्वरं लिङ्गं दशाश्वमेधजं फलम् ॥५०॥
शक्रह्रदे स्मर ! स्नाहि भाद्रस्य पूर्णिमातिथौ। त्रिवारं स्नानकर्तुश्च यत्पुण्यं शृणु सादरम्[४२] ॥५१॥
मित्रहत्यादिभिः पापैर्विमुक्तः सान्वयः शुचिः। वसेदिन्द्रासने तावद्यावन्मन्वन्तरं स्मर ॥५२॥
नवलिङ्गजले स्नाहि नवम्यां कार्तिकस्य च। शुक्लायां शृणु तल्लिङ्गदर्शनस्य फलं महत्[४३] ॥५३॥
अपमृत्युं परित्यज्य स शुचिः सान्वयः सुधीः। सर्वैनोभिर्विनिर्मुक्तः याति काले[४४] परां गतिम् ॥५४॥
मातृतीर्थे सुत स्नाहि चामावास्यां मधोः स्मर। मातृः समुद्धरेत्स्नाता लब्ध्वा गोलक्षजं फलम् ॥५५॥
मम प्रिये महातीर्थे भवद्भिः[४५] स्नायतां सुराः। आषाढशुक्लद्वादश्यां स्नानात् पुण्यफलं यथा[४६] ॥५६॥
स मुक्तश्च भवेत्सद्यः स्नानात्पापैः पुराकृतैः। गोसहस्रफलं दत्त्वा चोद्धरिष्यामि सान्वयम् ॥५७॥

---

हे कामदेव ! माघ महिनाको सङ्क्रान्तिका दिन यो मेरो तीर्थमा स्नान गर। जसले स्नान गरेर भक्तिपूर्वक मेरो दर्शन गर्छ त्यसको पुण्यफल सुन। त्यस व्यक्तिले फेरि योनिमा जन्मनुपर्दैन र अर्को मृत्यु भोग्नुपर्दैन। हजार गोमेध यज्ञ गरेको फल प्राप्त गरेर त्यो व्यक्ति परमपदमा पुग्छ। अब यस कनखल तीर्थमा स्नान गर। जसले पौषकृष्ण अष्टमीका दिन यस तीर्थमा स्नान गर्छ त्यो व्यक्ति लाख गाई दान गरेको फल प्राप्त गरेर रुद्रलोक जान्छ। अब यस नन्दीतीर्थमा स्नान गर। जसले माघकृष्ण चतुर्दशीका दिन यस तीर्थमा स्नान गरेर नन्दीश्वर भगवान्को दर्शन गर्छ त्यसले एक लाख गाई दान गरेको फल पाउँछ ॥४५-४८॥

हे पुत्र ! अब तिमी यस पद्मतीर्थमा स्नान गर। माघको शुक्ल अष्टमी तिथिका दिन स्नान गरेर दर्शन गर्ने व्यक्तिले लाखवटा गाई दान गरेको फल प्राप्त गरेर परमपदमा जान पाउँछ। यो असितातीर्थ हो। अब यहाँ स्नान गर। पौषशुक्ल अष्टमी तिथिका दिन यस तीर्थमा स्नान गरेर शिवलिङ्गको दर्शन गर्ने व्यक्तिले दशवटा अश्वमेध यज्ञ गरेको फल पाउँछ। यस शक्रदहमा स्नान गर। जसले भाद्र महिनाको पूर्णिमा तिथिका दिन तीनपटक यस दहमा स्नान गर्छ त्यसको पुण्यफल सुन। त्यो व्यक्ति मित्रहत्या आदि गरिएका पापबाट मुक्त हुन्छ। हे प्रद्युम्न ! मनुको पालो नबितेसम्म त्यो व्यक्ति पवित्र भएर परिवारैसहित इन्द्रासनमा गएर बस्न पाउँछ ॥४९-५२॥

हे कामदेव ! यो नवलिङ्ग जलमा स्नान गर। कार्तिकमहिनाको शुक्ल नवमीका दिन जसले यहाँ स्नान गरेर शिवलिङ्गको दर्शन गर्छ त्यसको फल सुन। त्यसले अकालमृत्यु भोग्नुपर्दैन। बुद्धिमान् त्यो मानिस पवित्र भएरसम्पूर्ण पापबाट मुक्त भई परिवारैसित परमगतिमा पुग्छ। हे छोरा ! मातातीर्थमा स्नान गर। वैशाख महिनाको अमावास्या तिथिका दिन यहाँ स्नान गर्ने व्यक्तिले मातृकुलको उद्धार गर्छ र लाख गाई दान गरेको फल पाउँछ। हे देवता हो ! यो मेरो प्यारो महातीर्थमा भक्तिपूर्वक स्नान गर। आषाढशुक्ल द्वादशीका दिन यहाँ स्नान गर्दा के फल प्राप्त हुन्छ, सुन। स्नान मात्रै गर्‍यो भने पनि त्यसले अघि गरेका सम्पूर्ण पापबाट तुरुन्तै मुक्ति पाउँछ, हजार गाई दान गरेको फल दिएर त्यसको वंशैसित म उद्धार गर्नेछु ॥५३-५७॥

---

३७. सहस्राणि गवां मेधं स लब्ध्वा याति मत्परम्, इति न.सं.पु.पाठः।
३८. गवां लक्षफलं प्राप्य रुद्रलोकं स गच्छति, इति न.सं.पु.पाठः।
३९. प्रपश्यति, इति न.सं.पु.पाठः।
४०. गवां लक्षफलं लभेत्, इति न.सं.पु.पाठः।
४१. गवां लक्षफलं लब्ध्वा याति सम्प्रेक्षकः परम्, इति न.सं.पु.पाठः।
४२. त्रिवारं स्नायते योऽत्र तस्य पुण्यफलं शृणु, इति न.सं.पु.पाठः।
४३. शुक्लायां स्नातको लिङ्गं पश्यति तत्फलं शृणु, इति न.सं.पु.पाठः।
४४. स यास्यति, इति न.सं.पु.पाठः।
४५. भक्त्याऽत्र, इति न.सं.पु.पाठः।
४६. आषाढस्य च शुक्लायां द्वादश्यां स्नायते शृणु, इति न.सं.पु.पाठः।

स्नाहि पुत्र ! सुरैः सार्द्धं कर्कोटकह्रदेऽत्र वै। श्रावणशुक्लपञ्चम्यां दशगोदानजं फलम्[४७] ॥५८॥
रुद्रतीर्थे सुत ! स्नाहि कृष्णायां श्रद्धया[४८] पुनः। कार्त्तिकस्य चतुर्दश्यां कपिलाशतजं फलम् ॥५९॥
वाग्वत्या रुद्रवत्याश्च सगुणाभिधसङ्गमे[४९]। माघस्य पूर्णिमायाञ्च स्नानात् गोशतजं फलम् ॥६०॥
मन्मूर्त्तिं पश्य लिङ्गञ्च स्नाहि तीर्थे तपोबुधे। द्वादशीसहिते स्नात्वा लक्षगोदानजं फलम्[५०] ॥६१॥
लुन्तीतीर्थे कुहौ स्नानात् चोशीरबीजरोपणात्। नमनाद् गुप्तलिङ्गस्य लक्षगोदानजं फलम्[५१] ॥६२॥
स्नात्वा पिण्डारके तीर्थे पश्यति चण्डिकेश्वरम्। तपसः सङ्क्रमे स्नात्वा तीर्थे पिण्डारके शिवम्[५२] ॥६३॥
द्वादश्यां स्नानतः पुत्र तपसः सङ्क्रमेऽपि वा। मत्पदोः सम्भवायाञ्च व्याप्याब्दं तत्फलं शृणु ॥६४॥
मोचयन्सर्वपापैस्तं पातकैः पूर्वजाश्रितैः। उद्धरिष्यामि देहान्ते कर्मभोगाद्धि संसृतेः ॥६५॥
सर्वतीर्थोत्तमायां त्वं वाराह्यां स्नाहि मन्मथ[५३]। लभेत गोशतं[५४] स्नाता तपःशुक्लाष्टमीतिथौ ॥६६॥
देवाः पश्यत मद्रूपमेनं शम्बरशायिनम्। ज्येष्ठिलाजीवने स्नात्वा यः पश्यति च पर्वसु ॥६७॥
सन्त्यज्य सर्वपापानि पुराकृतानि चाऽत्र सः। लक्षगोदानजं पुण्यं प्राप्य मल्लोकमाव्रजेत्[५५] ॥६८॥

---

हे छोरा ! देवताहरूका साथ यो कर्कोटक दहमा स्नान गर। श्रावणशुक्ल पञ्चमीका दिन यस तीर्थमा स्नान गर्ने व्यक्तिले दशवटा गाई दान गरेको फल पाउँछ। हे छोरा ! यो रुद्रतीर्थ हो, यहाँ स्नान गर। कार्तिककृष्ण चतुर्दशीका दिन यस तीर्थमा स्नान गर्ने व्यक्तिले सयवटा कैली गाई दान गरेको फल पाउँछ। वाग्वती र रुद्रवतीको सगुण नाम गरेको सङ्गममा माघपूर्णिमाको दिन जसले स्नान गर्छ त्यसले सयवटा गाई दान गरेको फल पाउँछ। माघ महिनाको बुधबारका दिन यस तीर्थमा स्नान गरेर मेरो मूर्तिको दर्शन गर। जसले माघ महिनाको द्वादशी परेको बुधबारका दिन यस तीर्थमा स्नान गर्छ त्यसले लाख गाई दान गरेको फल पाउँछ ॥५८-६१॥

लुन्तीतीर्थमा अमावास्याका दिन स्नान गरेर उशीर पर्वतमा चढी गुप्तलिङ्गेश्वर महादेवको भक्तिपूर्वक नमस्कार गर्दा एकलाख गाई दान दिएको फल प्राप्त हुन्छ। माघ महिनाको सङ्क्रान्तिका दिन पिण्डारक तीर्थमा स्नान गरेर चण्डिकेश्वर भगवान्को दर्शन गर्दा करोडौँ गाई दान गरेको फल प्राप्ति हुन्छ र त्यस्तो मानिस मरेपछि शिवलोकमा जान्छ। हे छोरा ! द्वादशीका दिन अथवा माघ महिनाको सङ्क्रान्तिका दिन मेरो पाउबाट पैदा भएकी अर्थात् विष्णुपदी गङ्गामा स्नान गर्‍यो भने एक वर्षभित्र के फल प्राप्त हुन्छ, त्यो सुन। त्यो सम्पूर्ण अघि गरेका पापबाट मुक्त हुन्छ। मरेपछि त्यसलाई कर्मको भोग गर्नुपर्ने संसारबाट म उद्धार गर्नेछु ॥६२-६५॥

हे कामदेव ! सबै तीर्थभन्दा पनि उत्तम तीर्थ भएको यो वाराहीतीर्थमा तिमी स्नान गर। यस तीर्थमा माघशुक्ल अष्टमीका दिन स्नान गर्ने व्यक्तिले सयवटा गाई दान गरेबराबरको फल पाउँछ। हे देवता हो ! जलशायी मेरो रूप हेर। जसले ज्येष्ठिला नदीमा स्नान गरेर पर्व-पर्वमा जलमा हेर्छ त्यसले जलभित्र रहेको मेरो यस रूपको दर्शन पाउँछ। जसले यहाँ स्नान गर्छ त्यो सबै अघि गरेका पापबाट मुक्त हुनेछ। एक लाख गाई दान गरेको फल प्राप्त गरेर त्यो मेरो लोकमा जानेछ ॥६६-६८॥

---

४७. दशगवां फलं लभेत्, इति न.सं.पु.पाठः।
४८. स्नातकः, इति न.सं.पु.पाठः।
४९. सगुणनाम्नि सङ्गमे, इति न.सं.पु.पाठः।
५०. यो द्वादशीयुते स्नाता गवां लक्षफलं लभेत्, इति न.सं.पु.पाठः।
५१. गुप्तलिङ्गं नमेद्भक्त्या गवां लक्षफलं लभेत्, इति न.सं.पु.पाठः।
५२. गोकोटिकं समाप्यैशं तपसः सङ्क्रमे व्रजेत्, इति न.सं.पु.पाठः।
५३. स्नायतां स्मर, इति न.सं.पु.पाठः।
५४. लभेद्गवां शतम्, इति न.सं.पु.पाठः।
५५. गवां लक्षफलं प्राप्य मम लोकं प्रगच्छति, इति न.सं.पु.पाठः।

चन्द्रभागाजले स्नाहि चाश्विनपूर्णिमादिने। सौम्ये यः स्नाति धर्मात्मा लक्षगोदानजं फलम्[५६] ॥६९॥
पैतामहे सुत ! स्नाहि स्नाता समुद्धरेत्कुलम्। अप्यधःस्थान्पितॄन् दर्शे भाद्रस्य गोशतं फलम् ॥७०॥
विमलाम्बुमहातीर्थे स्नात्वा पूजय देवताः[५७]। गौरीश्वरं महालिङ्गं सर्वलिङ्गोत्तमोत्तमम् ॥७१॥
गौर्या संस्थापितं पूर्वमेतल्लिङ्गं सुचेतसा। न चर्मचक्षुभिर्दृश्यं पापं मुञ्चति केवलम्[५८] ॥७२॥
सर्वपापैर्विनिर्मुक्तो लब्ध्वा सर्वक्रतूद्भवम्। भाद्रशुक्लतृतीयायां स्नातार्चकः परां व्रजेत् ॥७३॥
वाग्वत्याः प्रोद्भवे तीर्थे स्नायतां त्रिदशाः खलु। रुद्रजापी भवेद्योऽत्र स्नात्वा तस्य फलं शृणु ॥७४॥
सर्वपापविनिर्मुक्तः गोकोटिदानजं फलम्[५९]। लोके लोके सुखं भुक्त्वा स याति परमां गतिम् ॥७५॥
कावेर्यश्च महातीर्थे स्नात्वेशं स्मर पूजय। गोलक्षजं भवेत् पुण्यं[६०] भाद्रशुक्लाष्टमीतिथौ ॥७६॥
कावेर्या मणिमत्याश्च सङ्गमे स्नायतां सुराः। मणितीर्थजले चापि द्वादशीसंयुते बुधे ॥७७॥
आरुह्य स्नातकोऽमायां मत्प्रियाद्रिं प्रपश्यति। मोचयन् सर्वपापेभ्यो मल्लोकं तं नयाम्यहम् ॥७८॥
शङ्खह्रदे पुनः स्नाहि चानन्ताख्यह्रदे तथा। श्रावणे शुक्लपञ्चम्यां दशगोदानजं फलम्[६१] ॥७९॥
वीरभद्रे तथा स्नाहि वृद्धगङ्गाजले स्मर। कार्त्तिकस्य द्वयोः षष्ठ्योः गोत्रिंशद्दानजं फलम्[६२] ॥८०॥
सोमतीर्थे सुत स्नात्वा सोमलिङ्गप्रपूजनात्[६३]। आश्विनपूर्णिमायां वै गोकोटिदानजं फलम्[६४] ॥८१॥
शृङ्गतीर्थे तथा स्नात्वा गोभराटेशमर्चय। आषाढ्याः सङ्क्रमे सोमे स्नानात् गोलक्षजं फलम्[६५] ॥८२॥

---

हे छोरा ! अब यस चन्द्रभागा नदीमा स्नान गर। जसले आश्विनपूर्णिमाको दिन यहाँ स्नान गर्छ त्यसले एकलाख गाई दान गरेको फल पाउँछ। यो पितामहतीर्थमा स्नान गर। यसमा भाद्रमहिनाको अमावास्याका दिन स्नान गर्ने व्यक्तिले दुर्गतिमा परेका पितृहरूसमेत आफ्नो कुलको उद्धार गर्नेछ र सयवटा गाई दान गरेको फल प्राप्त गर्नेछ। हे देवता हो ! विमलाम्बु महातीर्थमा स्नान गरेर सबै लिङ्गमा उत्तम लिङ्ग भएको गौरीश्वर महालिङ्गको आराधना गर। यो लिङ्ग अघि प्रसन्न भएर भगवती गौरीले स्थापना गर्नुभएको हो। यहाँ शिवजीले पार्वतीलाई कहिल्यै पनि छाड्नुहुन्न। यो दृश्य छालाका आँखाले देखिँदैन। भाद्रशुक्ल तृतीयाको दिन स्नान गरेर पूजा गर्ने व्यक्ति सम्पूर्ण पापबाट मुक्त हुन्छ। उसले सबै यज्ञबाट पैदा हुने फल प्राप्त गर्छ र अत्यन्त परमगति पाउँछ ॥६९-७३॥

हे देवता हो ! तिमीहरू अब वाग्वती उत्पन्न भएको यस तीर्थमा स्नान गर। जसले यहाँ स्नान गरेर रुद्री गर्छ अर्थात् रुद्रमन्त्र जप गर्छ त्यसको फल सुन। त्यो व्यक्ति सम्पूर्ण पापबाट मुक्त हुन्छ। करोडौँ गाई दान गरेको फल पाउँछ। यस लोकमा सुखभोग गरेर अन्त्यमा परमगतिमा पुग्छ। हे कामदेव ! यो कावेरी महातीर्थमा स्नान गरेर शङ्करको पूजा गर। भाद्रशुक्ल अष्टमीका दिन जसले यहाँ स्नान गर्छ त्यसले एक लाख गाई दान गरेको फल पाउँछ ॥७४-७६॥

हे देवता हो ! तिमीहरू कावेरी र मणिमती मिसिएको यस तीर्थमा स्नान गर। द्वादशीले युक्त भएको बुधबारका दिन मणितीर्थको जलमा पनि स्नान गर। जसले अमावास्याका दिन यहाँ स्नान गरेर मेरो प्रिय पर्वतको दर्शन गर्छ त्यसलाई सबै पापबाट मुक्त गराएर म आफ्नो लोकमा लैजान्छु। शङ्खदह र अनन्तदहमा फेरि अब स्नान गर। श्रावणशुक्ल पञ्चमीका दिन यसमा स्नान गर्ने व्यक्तिले दशवटा गाई दान गरेको फल प्राप्त गर्छ। हे कामदेव ! वीरभद्रनामक यस वृद्धगङ्गाजलमा स्नान गर। कार्तिकशुक्ल र कृष्णषष्ठीका दिन स्नान गर्ने व्यक्तिले तीसवटा गाई दान गरेको फल पाउँछ। हे छोरा ! सोमतीर्थमा स्नान गरेर सोमलिङ्गको पूजा गर। जसले आश्विनपूर्णिमाका दिन स्नान गर्छ त्यस व्यक्तिले करोडौँ गाई दान गरेको फल पाउँछ। त्यस्तै, शृङ्गतीर्थमा स्नान गरेर गोभराटेश्वरको पूजा गर। आषाढसङ्क्रान्ति सोमबारका दिन स्नान गर्ने व्यक्तिले लाख गाई दान गरेको फल पाउँछ ॥७७-८२॥

---

५६. सौम्ये यः स्नायते चाऽत्र गवां लक्षफलं लभेत्, इति न.सं.पु.पाठः।
५७. प्रार्चयतां सुराः, इति न.सं.पु.पाठः।
५८. न त्यजति शिवः शिवाम्, इति न.सं.पु.पाठः।
५९. सर्वपापैर्विनिर्मुक्तो गवां कोटिफलं लभेत्, इति न.सं.पु.पाठः।
६०. लभेत्स्नाता, इति न.सं.पु.पाठः।
६१. दशगवां फलं लभेत्, इति न.सं.पु.पाठः।
६२. षष्ठ्यां गवां त्रिंशत्फलं लभेत्, इति न.सं.पु.पाठः।
६३. सोमलिङ्गं प्रपूजय, इति न.सं.पु.पाठः।
६४. यो गवां कोटिफलं लभेत्, इति न.सं.पु.पाठः।
६५. गवां लक्षफलं लभेत्, इति न.सं.पु.पाठः।

धर्मनद्या जले स्नाता ब्राह्महत्यां व्यपोहति। स्नायात्स्मर तपोऽष्टम्यां गोशतदानजं फलम्[६६] ॥८३॥
गोदावरीमहातीर्थे सिंहस्थश्च गुरुर्यदा[६७]। तदा स्नानात् भवेत् पुण्यं कोटिगोदानजं स्मर ![६८] ॥८४॥
अस्मिंस्तीर्थे स्मर स्नाहि हनूमदभिधानके[६९]। भाद्रशुक्लतृतीयायां गोहस्रफलं भवेत् ॥८५॥
रुद्रधारामहातीर्थे स्नात्वा कोटीश्वरं शिवम्[७०]। यः पश्यति मुदा भक्त्या[७१] तस्य पुण्यफलं शृणु ॥८६॥
कार्त्तिकीपूर्णिमायाञ्च परत्रजैरिहोद्भवैः। पातकैश्च महापापैर्मुच्यते स्नानतः क्षणात् ॥८७॥
सप्तजन्मार्जितैः पापैर्मुक्तो याति परां गतिम्। विकल्मषश्च[७२] देहान्ते कोटीश्वरप्रदर्शनात् ॥८८॥
शङ्खमूलमहातीर्थे स्नायतां त्रिदशैः स्मर। सर्वपर्वसु यः स्नाति[७३] तस्य पुण्यफलं शृणु ॥८९॥
शतगङ्गाभिधे तीर्थे सर्वपापैः प्रमुच्यते। इह लोकञ्च सन्त्यज्य स याति परमां गतिम् ॥९०॥
सर्वपर्वसु यत्नेन स्नातव्यं भक्तितोऽमराः। कामदेऽस्मिन्महातीर्थे भुक्तिमुक्तीप्सितप्रदे ॥९१॥
गोविप्रपितृबालस्त्रीवधपापैः स मुच्यते। कोटिगोदानसत्पुण्यं प्राप्य गच्छेत् परं पदम्[७४] ॥९२॥
पञ्चनद्यां महातीर्थे स्नायतां त्रिदशाः खलु। विष्णुमत्याश्च[७५] वाग्वत्याः सङ्गमे देवसेविते ॥९३॥
आश्विनसितपञ्चम्यां यः संस्नाति हि मत्प्रिये। सगोलक्षफलं प्राप्य मम लोकं व्रजेन्मुदा ॥९४॥

---

हे कामदेव ! धर्मनदीमा माघअष्टमीका दिन स्नान गर्‍यो भने ब्रह्महत्या नाश हुन्छ। सयवटा गाई दान गरेको फल प्राप्त हुन्छ। गोदावरीतीर्थमा सिंहराशि र हस्ता नक्षत्रमा सूर्य गएको अवस्थामा स्नान गर्नाले हजार गाई दान गरेको फल उपलब्ध हुन्छ। हे कामदेव ! हनुमान्‌नामक यस तीर्थमा भाद्रशुक्ल तृतीयाका दिन स्नान गर्नाले हजार गाई दान गरेको फल उपलब्ध हुन्छ ॥८३-८५॥

हे देवता हो ! रुद्रधारा तीर्थमा तिमीहरूले स्नान गर्नुपर्छ। यहाँ स्नान गरेर कोटीश्वर भगवान्‌को दर्शन गर्दा पाइने फल सुन। कार्तिकपूर्णिमाको दिन यहाँ स्नान गर्नाले यस लोक र अरू लोकमा भएका पातक तथा महापापबाट मानिस तुरुन्त मुक्त हुन्छ। कोटीश्वर भगवान्‌को दर्शन गर्दा सात जुनीसम्म गरेका पापबाट मुक्त भएर केही नगरे तापनि मरेपछि परमगतिमा पुग्छ ॥८६-८८॥

हे देवता हो ! हे कामदेव ! शङ्खमूल महातीर्थमा स्नान गर। यसमा सबै पर्वमा स्नान गर्ने व्यक्तिले पाउने पुण्य फल सुन। शतगङ्गानामक तीर्थमा स्नान गर्दा सम्पूर्ण पापबाट मुक्त होइन्छ। यस लोकलाई छाडेपछि त्यो व्यक्ति परमगतिमा पुग्छ। त्यसैले हे देवता हो ! सबै पर्वमा भक्तिपूर्वक प्रयासका साथ यहाँ स्नान गर्नुपर्छ। यो महातीर्थ इच्छा लागेको फलदाता, भुक्तिदाता र मुक्तिदाता पनि छ। यहाँ स्नान गर्ने व्यक्ति गाई, ब्राह्मण, पितृ, बालक र स्त्रीजातिको हत्याबाट लागेको पापदेखि मुक्त हुन्छ। करोडौं गाई दान गरेको फल प्राप्त गरी ऊ आफूखुसी परमगतिमा प्राप्त हुन्छ ॥८९-९२॥

हे देवता हो ! मेरो पाउबाट निस्किएकी यी नदी र देवताहरूद्वारा सुसेवित वाग्वतीको सङ्गम भएको यस पञ्चनदी महातीर्थमा स्नान गर। मेरो अत्यन्त प्रिय यस तीर्थमा आश्विनशुक्ल पञ्चमीका दिन जसले स्नान गर्छ त्यसले एक लाख गाई दान गरेबराबरको फल प्राप्त गरी स्वर्गलोकमा जान पाउँछ ॥९३-९४॥

---

६६. गवां शतफलं लभेत्, इति न.सं.पु.पाठः।
६७. सिंहहस्तो यदा भवेत्, इति न.सं.पु.पाठः।
६८. स्नानाल्लभेद्गवां कोटिभवं फलं विकिल्विषः, इति न.सं.पु.पाठः।
६९. स्नायाद्धनुमदभिधानके, इति न.सं.पु.पाठः।
७०. स्नातव्यं त्रिदशाः खलु, इति न.सं.पु.पाठः।
७१. स्नात्वा प्रेक्षति कोटीशम्, इति न.सं.पु.पाठः।
७२. कृतं विनाशु, इति न.सं.पु.पाठः।
७३. वाचकामासु यः स्नातः, इति न.सं.पु.पाठः।
७४. गवां कोटीफलं प्राप्य व्रजेद्यदृच्छया परम्, इति न.सं.पु.पाठः।
७५. मत्पद्याश्चात्र, इति न.सं.पु.पाठः।

मृगोदके तथार्याख्ये स्नायतां त्रिदशाः खलु। स्नात्वा प्रपश्यतां भूयो ज्योतिर्लिङ्गं महाविभुम् ॥९५॥
कार्त्तिकीपूर्णिमायां यश्चार्यातीर्थे जलाप्लुतः। पश्यति ज्योतिषां लिङ्गं तस्य पुण्यफलं शृणु ॥९६॥
सर्वजन्मचितैः पापैर्विमुक्तः सहसा बुधः। पुनर्जन्म परित्यज्य गच्छति परमं शिवम् ॥९७॥
गुह्येश्वरीं महादेवीं स्नात्वात्र पश्यत द्रुतम्[७६]। स्नात्वा महानवम्यां यश्चैनां पश्यति तच्छृणु ॥९८॥
सर्वैनोभिर्विनिर्मुक्तो लभेत कोटिगोफलम्[७७]। गच्छति परमं स्थानं विहाय संसृतिं पुनः ॥९९॥
अष्टाशीतिषु तीर्थेषु सेतुभेदादिषु ध्रुवम्[७८]। स्नानेन[७९] त्रिदशा भक्त्या प्राप्नुयुः सुफलानि च ॥१००॥
सर्वजन्मार्जितैः पापैर्विमुक्ताः स्नातकाः क्षणात्। विहाय चोद्भवं भूयः व्रजेमः परमं पदम्[८०] ॥१०१॥
वाग्वती सरितां श्रेष्ठा वाग्वती लोकपाविनी। वाग्वती पूजिता देवैर्वाग्विभूतिप्रलब्धये ॥१०२॥
वाग्वती नो गतिर्देवाः सर्वदुष्कृतहारिणी। वाग्वती चैव पूज्या स्याद्वाग्वती दुःखतारिणी ॥१०३॥
वाग्वती दुरितघ्न्येषा स्नातकानां मुनीश्वराः। वाग्वती सुगतिश्चापि मुमुक्षूणां हि योगिनाम् ॥१०४॥
वाग्वती पूज्यतां शश्वत्सर्वविभूतिमिच्छता। शतगङ्गासमा ज्ञेया कलौ प्राप्ते हि वाग्वती ॥१०५॥
वन्देऽहं वाग्वतीं देवीं भक्तसन्दोह[८१]तारिणीम्। रुद्रमुखोद्भवां वाणीं ब्रह्मवाणीं सरस्वतीम् ॥१०६॥

---

हे देवता हो ! मृगोदक नाम गरेको यस तीर्थमा स्नान गर। यहाँ स्नान गरेर फेरि महाप्रभु पशुपतिको ज्योतिर्लिङ्गको दर्शन गर। कार्तिकपूर्णिमाको दिन आर्यतीर्थमा स्नान गरेर जसले ज्योतिःस्वरूप भगवान् शिवलिङ्गको दर्शन गर्छ त्यस पुण्यको फल सुन। त्यो सम्पूर्ण जन्ममा गरेका पापबाट तुरुन्तै मुक्त हुन्छ। त्यसले पुनर्जन्म लिँदैन र शिवको परमपदमा पुग्छ ॥९५-९७॥

हे देवता हो ! यहाँ स्नान गरेर गुह्येश्वरी महादेवीको दर्शन गर। जसले महानवमीका दिन स्नान गरेर गुह्येश्वरी भगवतीको दर्शन गर्छ त्यसको पुण्य फल सुन। त्यो सम्पूर्ण पापबाट मुक्त हुन्छ। करोडौँ गाई दान गरेको फल त्यसले पाउँछ। यस संसारलाई छोडेपछि भगवान्को परमपदमा जान्छ। सेतुभिन्नादि गरिएका अठासी तीर्थहरूमा भक्तिपूर्वक स्नान गर। त्यसमा तिमीहरूलाई सफलता पनि प्राप्त हुनेछ। यसमा स्नान गर्ने व्यक्ति सम्पूर्ण जन्ममा लागेका पापबाट मुक्त हुन्छ। यस संसारमा उत्पन्न हुने क्रियालाई छोडेर त्यो परमगतिमा पुग्छ ॥९८-१०१॥

सबै नदीहरूमध्ये वाग्वती श्रेष्ठ नदी हुन्। वाग्वतीले संसारलाई पवित्र तुल्याउँछिन्। वाणीरूपी ऐश्वर्यप्राप्तिका निमित्त वाग्वतीलाई देवताले पनि पूजा गरेका छन्। हे देवता हो ! हाम्रो गति भनेकी वाग्वती हुन्। उनले सम्पूर्ण दुर्गतिलाई हटाउँछिन्। वाग्वती सबैकी पूज्य छिन्। वाग्वतीले सम्पूर्ण दुःखबाट मुक्त गराउँछिन्। हे मुनिहरू हो ! वाग्वतीले यहाँ स्नान गर्ने व्यक्तिहरूको पापलाई नाश गर्छिन्। मोक्ष चाहने योगीहरूका निमित्त वाग्वतीले सद्गति दिन्छिन्। आफ्नो कल्याण चाहने व्यक्तिले वाग्वतीको बारम्बार पूजा गर्नुपर्छ। कलियुग लागेपछि वाग्वतीलाई शतगङ्गाजस्तै ठान। सम्पूर्ण लोकलाई तार्ने रुद्रको मुखबाट पैदा भएकी ब्रह्मवाणी सरस्वतीरूपा वाग्वती देवीलाई म नमस्कार गर्छु ॥१०२-१०६॥

---

७६. पश्यतां सुराः, इति न.सं.पु.पाठः।
७७. गोकोटिफलमाप्नुयात्, इति न.सं.पु.पाठः।
७८. अष्टाशीषु च तीर्थेषु सेतुभिन्नादिषु ध्रुवम्, इति न.सं.पु.पाठः।
७९. स्नायताम्, इति न.सं.पु.पाठः।
८०. स व्रजेत्परमां गतिम्, इति न.सं.पु.पाठः।
८१. सर्वलोकस्य, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

स्नात्वैवं सर्वतीर्थेषु तत्र देवर्षियादवाः । मुमुदिरे समाकर्ण्य तीर्थनामानि शार्ङ्गिणः ॥१०७॥
मेनिरे चात्मभिर्देवाः कृतार्थतां तथा मुने । नारदश्च प्रहृष्टात्मा व्याचष्ट हरये वचः ॥१०८॥

अध्यायं वै समखिलमिदं ये च शृण्वन्ति भक्त्या
ते प्राप्स्यन्ति प्रसभमखिलं तत्फलं स्नानजन्यम्[८२] ॥
कीर्त्तिं सस्यं धनमपि मतिं स्वात्मजं कामिनीञ्च
तेषां शश्वत्प्रबलरिपवो यान्ति सद्यो विनाशम् ॥१०९॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये प्रद्युम्नोत्तरे कृष्णतीर्थयात्रायां
पञ्चाशीत्यधिकशततमोऽध्यायः ॥१८५॥

---

कार्तिक स्वामीले भन्नुभयो – यसरी देवता, ऋषि र यादवहरूले सबै तीर्थमा स्नान गरेर भगवान् कृष्णबाट तीर्थका नामहरू सुने र अत्यन्त आनन्दित भए। हे ऋषि ! देवताहरूले पनि आफूलाई कृतार्थ ठाने। नारदले पनि प्रसन्न भएर भगवान्लाई भन्नुभयो ॥१०७–१०८॥

हे अगस्त्य मुनि ! जसले भक्तिपूर्वक यो सबै अध्याय सुन्छ, ती व्यक्तिहरूले ती–ती तीर्थहरूमा स्नान गरेको फल पाउँछन् । कीर्ति, धन, धान्य, बुद्धि, छोरा र पत्नी पनि पाउँछन् । तिनीहरूका बलिया शत्रुहरू पनि तुरुन्तै नाश हुन्छन् ॥१०९॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डको प्रद्युम्नोत्तरमा भगवान् श्रीकृष्णको तीर्थयात्रानामक
एकसय पचासियौं अध्याय पूरा भयो ।

---

८२. मुमुदुर्भृशमाकर्ण्य, इति न.सं.पु.पाठः ।

# षडशीत्यधिकशततमोऽध्यायः

सुप्रभानगरप्रवेशः

नारद उवाच

भगवन् ! पुण्डरीकाक्ष सर्वसत्त्वदयानिधे। शृणुष्व मद्वचो विष्णो ! त्वच्छासनसुखान्विताः[1] ॥१॥
आसते सर्वलोकाश्च ह्यधुना विगतज्वराः। त्वत्प्रसादान्महाविष्णो ! हतेषु दानवेषु च ॥२॥
आसीन्मृगेन्द्रशैले च सूर्यकेतुर्नृपो हरे। सुतां दातुञ्च कामाय चिरकालं समुत्सुकः ॥३॥
सङ्ग्राहयितुकामोऽसौ सूर्यकेतुः सुताकरम्[2]। प्रदास्यति सुताञ्चास्मै विवाहेन नृपोत्तम ॥४॥
गन्तव्या भगवन् ! तस्मात् सुप्रभा सा वरा पुरी[3]। द्रष्टव्यं मार ! तद् राज्यं शक्रारेः सुमहत्तरम् ॥५॥
दर्शयतु सुरानेतान् तत्तद्गेहं पुरीं हरे। प्रविश्य तत्पुरञ्चाशु विविधान् रत्नसञ्चयान् ॥६॥

स्कन्द उवाच

एवं संवादसमये तत्र नारदकृष्णयोः[4]। प्रेषयामास दूतं स सूर्यकेतुर्हि तत्र च ॥७॥
सुमन्त्रो नाम मन्त्री तं प्रणिपत्याशु भक्तितः। उवाच वचनं सर्वं कृष्णाय नृपदेशितम् ॥८॥

सुमन्त्र उवाच

नमस्ते भगवन् तुभ्यं निवेदयामि मत्तनुम्। राजा देहमनोवाक्यैस्त्वां भद्रपूर्वकं भजेत् ॥९॥
अत्रैव रजनीं भूमन् स्थित्वा कृपां कुरु[5] प्रभो। यावन्न दीयते कन्या मया कामाय केशव ॥१०॥
आकर्ण्य तद्वचः कृष्णो मुमुदे प्रेमतो[6] भृशम्। सूर्यकेतोर्हि सन्देशाद् गन्तुमियेष तत्र च ॥११॥

---

## अध्याय - १८६

### श्रीकृष्णको सुप्रभानगरीमा प्रवेश

नारदजीले भन्नुभयो – सम्पूर्ण प्राणीलाई दया गर्ने हे भगवान् विष्णु ! म हजुरको शासनमा बसेको छु, मेरो भनाइ सुन्नुहोस्। हे महाविष्णु ! सम्पूर्ण दानवहरू मरेपछि अहिले हजुरको कृपाले गर्दा सम्पूर्ण प्राणीहरू सन्तापमुक्त भएर बसेका छन्। हे भगवन् ! मृगेन्द्र पर्वतमा सूर्यकेतु नाम गरेका एक जना राजा छन्। उनी धेरै अघिदेखि प्रद्युम्नलाई आफ्नी छोरी दिन चाहन्छन्। अब हजुरले प्रद्युम्नलाई ती राजकुमारीको विवाह गर्न लगाउनुहोस्। ती राजाले आफ्नी छोरी विवाहविधिले हजुरका सुपुत्र प्रद्युम्नलाई दिनेछन्। हे भगवन् ! त्यसपछि उत्तम सुप्रभा नाम गरेको शहरमा जानुपर्दछ। हे प्रद्युम्न ! त्यहाँ गएर दानवको ठूलो राज्य हेर्नुपर्छ। हे विष्णु ! यी देवताहरूलाई त्यो शहरमा लगेर त्यहाँको शहर, त्यहाँका घर, विभिन्न किसिमका रत्नहरूको ढुकुटी सबै देखाइदिनुपर्छ ॥१-६॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! यसरी नारद र भगवान् कृष्णको वार्ता चलिरहेको अवस्थामा सूर्यकेतु राजाले त्यहाँ एउटा दूत पठाए। सुमन्त्र नाम गरेको सूर्यकेतु राजाको मन्त्रीले त्यहाँ आएर भक्तिपूर्वक प्रणाम गऱ्यो र कृष्णलाई राजाको सबै सन्देश सुनायो ॥७-८॥

सुमन्त्रले भने – हे भगवन् ! हजुरलाई नमस्कार छ। म हजुरलाई मेरो शरीर समर्पण गर्दछु। म मेरो तन, मन र वचनले हजुरको कल्याण चिताउँदै सेवा गर्न चाहन्छु। हे प्रभो ! मैले आफ्नी छोरी प्रद्युम्नलाई नदिएसम्म राति यसै ठाउँमा बस्ने कृपा गर्नुहोस्, भनेर राजाले भन्नुभएको छ। कृष्ण त्यो सूर्यकेतुको सन्देश सुनेर अत्यन्त खुसी हुनुभयो र त्यसअनुसार उहाँ त्यहाँ जाने विचार गर्नुभयो ॥९-११॥

---

१. शृणु मद्वचनं विष्णो त्वच्छासनरतस्य च, इति न.सं.पु.पाठः।
२. गृह्यापयितुकामेन सूर्यकेतुसुतां करम्, इति न.सं.पु.पाठः।
३. गन्तव्यं भगवन् ! तस्मात्सुप्रभां तां पुरीं वराम्, इति न.सं.पु.पाठः।
४. एवं संभाषणे जाते कृष्णेन सह नारदे, इति न.सं.पु.पाठः।
५. कृपयसि, इति न.सं.पु.पाठः।
६. तस्मै मुमोद वै भृशम्, इति न.सं.पु.पाठः।

प्रययौ सहसा कृष्णस्ताक्ष्यारूढोऽमरैः समम्। द्युनदीसम्भवो यत्र मृगेन्द्रशिखरोत्तमे ॥१२॥
आभाष्य कुशलं सर्वं भक्त्या ननाम केशवम्। देवर्षीन् यादवान् शश्वन्मानयन् तान् पृथक् पृथक् ॥१३॥
सत्कारञ्च नृपः कृत्वा तेषां स्वतनयां[७] तदा। प्रददौ विधिवद्रात्रौ कामायोपयमेन वै ॥१४॥
दत्त्वा सुतां स कामाय व्योम्नि शिवगणैः समम्। पुष्पकेण ययौ भूयो दर्शयन्स्वां पुरीं सुरान् ॥१५॥
विवाहान्ते च कन्दर्पः[८] चन्द्रवत्या समन्निशि। रेमे सुखं गिरौ तीव्रं सर्वक्रीडाविशारदः ॥१६॥
विष्णुपद्यां ततः स्नात्वा देवर्षियादवैः समम्। ययौ सदर्पकः कृष्णः सुप्रभानगरं पुनः ॥१७॥
प्रविश्यैशं विलं देवाश्चन्दनाचलकन्दरे। ददृशुर्भवनं राज्ञः शक्रारेः साट्टगोपुरम् ॥१८॥
ज्वालमालासमाकीर्णैर्नानारत्नांशुभिः पुरम्। हेममयैर्महत्तुङ्गैः गृहैश्वेतैर्विराजते[९] ॥१९॥
खचितैर्बहुरत्नैश्च[१०] गवाक्षैस्तोरणैर्बभौ। क्वचित्स्वर्णच्छदैश्चान्यैर्वलभीराजतैः शिवम् ॥२०॥
समापुर्विस्मयं देवाः शक्रारेः प्रेक्ष्य पूजितम्। सुचित्रं भवनं भव्यं[११] चन्द्रखण्डविराजितम् ॥२१॥
विवेश केशवो राज्यं तस्थौ सुरैः समं मुदा। प्रासादे खलु शक्रारेर्द्वारवत्यां यथा मुने ॥२२॥
शेषा दैत्यास्ततः कृष्णं बहुमान्यजनैः सह[१२]। अपूपुजन् ससम्मानं[१३] नानापूज्योपहारकैः ॥२३॥
हंसी दूतैश्च कन्दर्पमानिनाय सुहर्म्यके[१४]। अयोजयत्प्रभावत्या ससम्मानं हि कोष्ठके ॥२४॥
अचीक्रिडत्ततो हर्म्ये प्रभावत्या समं स्मरः। सुरतिकुशलश्चन्द्रतुल्यया[१५] च महानिशि ॥२५॥
स्वाङ्के तां स समाधाय कामो वचनमब्रवीत्। समालिङ्गन् तया चुम्बन्[१६] प्रासादोपरि कोष्ठके ॥२६॥

---

सबै देवताहरूलाई साथमा लिई आकाशमार्गद्वारा भगवान् कृष्ण तुरुन्त त्यस मृगेन्द्राचलको शिखरमा जानुभयो। ती राजाले भक्तिपूर्वक कुशल प्रश्न गरेर भगवान् विष्णु, देवर्षि र यादवहरूलाई छुट्टाछुट्टै प्रसन्न तुल्याउँदै नमस्कार गरे। त्यसपछि राजाले तिनीहरूको सत्कार गरे अनि राति विधिवत् विवाह गरेर आफ्नी छोरी प्रद्युम्नलाई समर्पण गरे ॥१२-१४॥

प्रद्युम्नलाई छोरी दिएर ती राजा शिवगणहरूका साथ पुष्पक विमानमा बसेर देवताहरूलाई डुलाउन हिँडे। सबै किसिमको क्रीडा गर्न सिपालु प्रद्युम्नले सूर्यकेतुकी छोरीसित विवाह गरेर पहाडमा बसी खूबसित भोगविलास गर्नुभयो। विष्णुपदीमा स्नान गरेर देवता, ऋषि र यादवहरूका साथ प्रद्युम्नसहित भगवान् कृष्ण सुप्रभा नगरतिर जानुभयो। चन्दन पर्वतको यो ओड्ारभित्र पसेर देवताहरूले दानवको राज्यभित्र रहेका अग्ला, पुरद्वार र घरहरू हेरे ॥१५-१८॥

ती घरहरू रत्नको चहकले गर्दा झल्झलाकार भएका थिए। त्यो शहर सुवर्णमय अत्यन्त अग्ला सेता घरहरूले सुशोभित भएको थियो। त्यहाँ विभिन्न किसिमका रत्नमय आँखीझ्याल, तोरण, कतै सुनका छाना र चाँदीका बलाहरू थिए। तिनले गर्दा ती घरहरू अत्यन्त सुन्दर देखिन्थे। राक्षसले पूजा गरेका, चन्द्रकलाले सुशोभित भगवान् शङ्करलाई देखेर देवताहरू आश्चर्यले चकित भए। हे अगस्त्य मुनि ! त्यसपछि भगवान् कृष्ण देवताहरूका साथ प्रसन्न भएर द्वारकाको घरभित्र पसेझैं गरी दैत्यहरूको त्यस शहरमा प्रवेश गर्नुभयो। त्यहाँ बचेका दैत्यहरूले अत्यन्त सम्मानका साथ विभिन्न पूजासामग्रीहरूद्वारा देवता र भगवान् कृष्णको पूजा गरे। अरू दूतहरूको मुखबाट थाहा पाएर हंसीले प्रद्युम्नलाई महलमा लगी र खोपीमा प्रभावतीसँग मिलाइदिई। रतिक्रीडामा कुशल भएका प्रद्युम्नले पनि त्यस भगवनमा चन्द्रमाजस्ती प्रभावतीका साथ रातभर क्रीडा गर्नुभयो। माथिल्लो तलामा रहेको कोठामा तिनलाई काखमा राखेर कामदेवले चुम्बन गर्दै प्रभावतीसँग भन्न लाग्नुभयो ॥१९-२६॥

---

७. स्वदुहिताम्, इति न.सं.पु.पाठः।
८. उद्वाह्य दर्पकस्तत्र, इति न.सं.पु.पाठः।
९. सितशालैर्विराजते, इति न.सं.पु.पाठः।
१०. खचितैर्बुहुरत्नानाम्, इति न.सं.पु.पाठः।
११. सुचित्रमाप्तवन्तस्ते, इति न.सं.पु.पाठः।
१२. बहुमान्यपुरस्सरैः, इति न.सं.पु.पाठः।
१३. हि तैः सार्द्धम्, इति न.सं.पु.पाठः।
१४. दूतमुखाद्धि कन्दर्पं हंसी स्वानीय हर्म्यकम्, इति न.सं.पु.पाठः।
१५. रतिज्ञकुशलस्तस्य, इति न.सं.पु.पाठः।
१६. आलिङ्ग्य चुम्बयन् शश्वत्, इति न.सं.पु.पाठः।

प्रद्युम्न उवाच

सेवस्वार्ये गतिं वायोः पुष्पसौगन्धशीतलाम्। त्वन्मुखोच्छ्वासतुल्यां तां[१७] जनानां स्वान्तहारिणीम्॥२७॥
पश्य भाति प्रिये व्योम्नि पूर्णेन्दुञ्च सुनिर्मलम्। तवाननसमं शुभ्रं प्रसृतं सर्वतः करैः[१८] ॥२८॥
चकोरान् पश्य सुश्रोणि! कुचयुग्मोपमान् तव। सरोवरतटे भान्ति पृथक् युग्मगताः खलु॥२९॥
सन्ततिं पश्य पद्मानां तत्र सरोवरे प्रिये। मुकुलितां कान्तिमयीं[१९] कमलायतलोचने॥३०॥
पश्यार्ये कुमुदारण्यं हिमांशोः प्रियकारकम्। प्रफुल्लञ्च करैरिन्दोः पुंसां स्पर्शैर्यथाऽबलाः॥३१॥
पश्य भृङ्गं रसोन्मत्तं विकसत्कुमुदाकरे[२०]। त्यक्त्वा मुकुलितं पद्ममन्यासक्तं नरं यथा[२१] ॥३२॥
मन्दमारुतविक्षेपैः प्रचलद्भिः सुकोमलम्। पल्लवाञ्जलिभिः पुष्पं क्षिपन्ति तरवः प्रिये॥३३॥
स्मितपुष्पद्रुमोपेतं पल्लवाधरमञ्जुलम्[२२]। भ्रूलतानृत्यललितमुद्यानमिव त्वन्मुखम्॥३४॥

स्कन्द उवाच

इत्युक्त्वा प्रियवाक्येन प्रियां प्रेमप्रवर्त्तकः। रमयामास प्रद्युम्नः[२३] प्रासादोपरि तां मुहुः॥३५॥
व्यतीतायां निशायां स चावतार्य गृहान्तरात्। वन्दयामास तां कृष्णं[२४] दूरतो हि प्रभावतीम्॥३६॥
कञ्चित्कालं खलु मधुरिपुः सुप्रभायां नगर्या– मेवावात्सीत्सह सुरगणैर्व्याप्य मासैकमात्रम्।
तत्कोषस्थान्सुवसुनिचयान्दर्शयन्देवताश्च स्वर्गाद् भूम्या बलिसदनतश्चानीतान् लुण्ठनेन[२५] ॥३७॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये प्रद्युम्नोत्तरे सुप्रभाप्रवेशशीर्षकयुतः षडशीत्यधिकशततमोऽध्यायः॥१८६॥

---

प्रद्युम्नले भनुभयो – हे प्रिये! तिम्रो मुखबाट निस्किएको सुगन्ध, शीतल र मानिसको मन हर्ने हावा खुवाऊ। हे प्रिया! हेर! आकाशमा तिम्रो मुखजस्तै उज्याला सबैतिर किरणहरू फिँजाएर पूर्णिमाका निर्मल चन्द्रमा झल्मलाइरहेका छन्। हे सुश्रोणी! तिम्रा दुई स्तनजस्ता यी च्याखुराहरूलाई हेर। तलाउका छेउछाउमा छुट्टाछुट्टै भएर यिनीहरू के राम्रोसित बसेका छन्। कमलजस्तो ठूला आँखा भएकी हे प्रिया! त्यो तलाउमा कमलका झोँगहरू हेर। सबै फूलहरू अहिले गुजुमुज्ज परिसकेका छन्। फेरि चन्द्रमालाई प्यारो लाग्ने यी चन्द्रकमललाई हेर। पुरुषको हातले छुँदा युवतीको आङ ढक्क फुलेझैं चन्द्रमाको किरणको स्पर्शले गर्दा यिनीहरू ढकमक्क भएर फुलिरहेका छन्॥२७–३१॥

हे प्रिया! यी भ्रमराका वथानहरूलाई हेर। यिनीहरू एउटासँगको हाँसखेल सकिएपछि अर्कापट्टि लागेका पुरुषझैं मुर्झेको कमललाई छोडेर फुल्न लागेका चन्द्रकमलपट्टि आउँदैछन्। हे प्यारी! सिरसिर चलेको बतासले हल्लाएका पालुवारूपी अञ्जुलीले यी रुखहरू कलिला फूलहरू छर्न लागिरहेका छन्। मुस्कानरूपी फूल फुलेका, सुन्दर ओठरूपी पालुवा भएको, आँखीभौँरूपी लहरा नाचेको यो तिम्रो मुहार सुन्दर फूलबारीजस्तो देखिन्छ॥३२–३४॥

कार्तिक स्वामीले भनुभयो – यसरी मीठा–मीठा कुरा गरेर आकर्षित गराउने रुक्मिणीका छोरा प्रद्युम्नले दरबारमाथि बसेर प्यारी प्रभावतीसँग खूब हाँसखेल गर्नुभयो। रात बितेपछि प्रद्युम्नले खोपीबाट प्रभावतीलाई ओह्रालेर पर्दैबाट भगवान् कृष्णको दर्शन गराए। भगवान् श्रीकृष्ण देवताहरूका साथमा एक महिना जति त्यस सुप्रभा नगरीमा बस्नुभयो। उहाँले स्वर्ग, पृथ्वी र पातालबाट दैत्यले लुटेर ल्याई ढुकुटीमा राखेका असल–असल गहना तथा रत्नहरू देवताहरूलाई देखाइदिनुभयो॥३५–३७॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको हिमवत्खण्डको प्रद्युम्नोत्तरमा भगवान् श्रीकृष्णको सुप्रभानगरीमा प्रवेशनामक एकसय छयासियौं अध्याय पूरा भयो।

---

१७. सदृशां त्वन्मुखोद्भूताम्, इति न.सं.पु.पाठः।
१८. तवाननसमां शुभ्रां विहार्य सर्वतः करैः, इति न.सं.पु.पाठः।
१९. मुकुलितं गतां सर्वाम्, इति न.सं.पु.पाठः।
२०. पश्य भृङ्गाकुलं कान्ते विकशत्कुमुदाकरम्, इति न.सं.पु.पाठः।
२१. पद्मं रत्यन्तरं यथा पुमान्, इति न.सं.पु.पाठः।
२२. रुचिराधरपल्लवम्, इति न.सं.पु.पाठः।
२३. रराम रुक्मिणीसूनुः, इति न.सं.पु.पाठः।
२४. वन्दयामास कृष्णं तान्, इति न.सं.पु.पाठः।
२५. लुण्ठ्य तेन, इति न.सं.पु.पाठः।

# सप्ताशीत्यधिकशततमोऽध्यायः

## इन्द्रस्य स्वर्गं प्रति प्रस्थानम्

### स्कन्द उवाच

ततः कृष्णः समाहूय नागलोकान् रसातलात्। वज्रेण लुण्ठितं यत्तत्तेभ्यो ददौ पुनर्मुने ॥१॥
दिग्विजयेन पूर्वस्मिन् वज्रेण लुण्ठितं वसु[1]। कृष्णप्रसादतो नागाः प्राप्य ययू रसातलम् ॥२॥
ततः कृष्णो रसापालान् समाहूयः ददौ पुनः। तेभ्यः कोषाद्धि तावन्ति यावन्ति लुण्ठितानि हि[2] ॥३॥
तेऽपि ययुः पुरं स्वं स्वं पदार्थांश्च वसूनि च। लब्ध्वा कृष्णप्रसादाद्वै हर्षप्रोत्फुल्लमानसाः ॥४॥
ततश्च दिग्पतीन्कृष्णो यानि तानि हृतानि च। जित्वा पुरा च वज्रेण तेभ्यो ददौ तथा मुने ॥५॥
तेऽपि लब्ध्वा वसु स्वं स्वं ययुरष्टदिशं मुदा। सम्पूज्य केशवं भक्त्या हर्षपूर्णमनोरथाः ॥६॥
एवं प्रास्थापयत् कृष्णः सिद्धान्मुनिगणान्पुनः। सत्कृत्य पूजनैर्भक्त्या भूरिभोज्यानि भोजयन् ॥७॥
एवं प्रास्थापयत् सिद्धान् मुनीन् दिक्पान् रसापतीन्। समाहूय सुरान् कृष्णस्तेभ्यस्तत्तदददौ पुनः ॥८॥
ततो देवगणान्कृष्णः सत्कृत्य च मुहुर्मुहुः। महार्हाणि च वासांसि तेभ्यो रत्नानि सन्ददौ ॥९॥
स्वर्गाद् हृतानि यावन्ति सञ्चितानि च तत्पुरे[3]। वस्तूनि तानि सर्वाणि[4] ददौ शक्राय केशवः ॥१०॥

---

## अध्याय – १८७

### स्वर्ग जानका लागि इन्द्रको प्रस्थान

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! त्यसपछि भगवान् कृष्णले रसातलबाट नागहरूलाई बोलाएर वज्रासुरले लुटेको जति सबै सम्पत्ति फिर्ता दिनुभयो ॥१॥ पहिलेको समयमा वज्रासुरले दिग्विजय गर्दा जति पनि सम्पत्ति लुटेको थियो, कृष्णको अनुग्रहबाट त्यो सम्पूर्ण सम्पत्ति प्राप्त गरेर नागहरू पातालतिर गए ॥१–२॥

यसैगरी भगवान् कृष्णले त्यस दैत्यले कोषबाट अपहरण गरेको जति पनि सम्पत्ति थियो त्यो सारा सम्पत्ति पातालका रक्षकहरूलाई बोलाएर दिनुभयो। अपहरण गरिएका पदार्थ र सम्पत्तिहरू कृष्णको कृपाबाट प्राप्त भएपछितिनीहरू पनि अत्यन्त प्रसन्न हुँदै आ–आफ्नो वासस्थानतर्फ प्रस्थान गरे ॥३–४॥

हे अगस्त्य मुनि ! भगवान् कृष्णले अघि वज्रासुरले हरण गरेर जे–जति सामानहरू ल्याएको थियो, ती सबै सामान ज–जसका थिए, ती–ती व्यक्तिलाई फिर्ता गरिदिनुभयो। आ–आफ्नो सम्पत्ति प्राप्त गरेपछि तिनीहरू अत्यन्त प्रसन्न हुँदै भक्तिपूर्वक भगवान् कृष्णकोअर्चना गरेर आठै दिशातिर लागे। त्यसपछि भक्तिपूर्वक भगवान् कृष्णले सिद्ध र मुनिहरूको पूजा–सत्कार गर्नुभयो, प्रशस्त भोजन गराउनुभयो र आ–आफ्नो स्थानतर्फ प्रस्थान गराउनुभयो। यसैगरी भगवान् कृष्णले सिद्ध, ऋषि, दिक्पाल, देवता तथा राजालाई बोलाएर ती–ती वस्तु प्रदान गरी उनीहरूलाई बिदा गरिदिनुभयो। त्यसपछि भगवान् कृष्णले देवताहरूलाई बारम्बार सत्कार गरेर बहुमूल्य लुगाहरू र रत्नहरू पनि प्रदान गर्नुभयो। त्यस दैत्यले इन्द्रलोकबाट जे–जति पदार्थ हरण गरेर वज्रपुरमा ल्याएर राखेको थियो, भगवान् कृष्णले ती सबै इन्द्रलाई नै दिनुभयो ॥५–१०॥

---

१. लुण्ठितान् वसून्, इति न.सं.पु.पाठः।
२. तावन्तो यावन्तस्तेन संहृताः, इति न.सं.पु.पाठः।
३. तेन हृतानि यावन्ति सञ्चितान् च सर्वशः, इति न.सं.पु.पाठः।
४. वज्रपुरे ततः कृष्णः, इति न.सं.पु.पाठः।

महार्हाणि च वासांसि रत्नानि विविधानि च। अन्यानि चापि वस्तूनि स दिवस्पतये ददौ[५] ॥११॥
परिष्वज्य हरिर्दोर्भ्यां प्रणामान्ते पुरन्दरम्। व्याचष्ट वचनं तत्र भूयः सम्मानपूर्वकम्[६] ॥१२॥

कृष्ण उवाच

भ्रातस्तव प्रसादाद्वै हताः पापाश्च शत्रवः। त्वामवलम्ब्य कामेन देवानामोजसा तथा ॥१३॥
दिष्ट्या हताश्च पापा नः प्रद्युम्नेन तवौजसा। सुस्था भवन्ति लोका नस्त्रैलोक्येषु च सर्वतः ॥१४॥
दुःखदग्धा भृशं लोकास्तस्मात्पापान्निरन्तरम्। भवेयुः सुस्थिरा अद्य वज्रशक्तिनिपीडिताः[७] ॥१५॥
प्रगच्छतु भवान् भ्रातर्नाकं देवान् प्रपालय। भुनक्तु[८] त्रिदशैः सार्द्धं राज्यभोग्यं यथासुखम् ॥१६॥

स्कन्द उवाच

आकर्ण्य वचनं विष्णोर्हर्षवाष्पाकुलेक्षणः। परिष्वज्यानुजं गाढं दोर्भ्यां कृष्णं पुरन्दरः ॥१७॥
व्याचष्ट वचनं तस्मै हर्षगद्गदभाषणैः। प्रणामञ्च मुहुः कृत्वा भक्त्या स्मरन् धिया विभुम् ॥१८॥

इन्द्र उवाच

मैवं भगवता मह्यं त्रैलोक्येशेन केशव। वाक्यमिदं हि वक्तव्यं सर्ववन्द्येन सर्वथा ॥१९॥
त्वमेव भगवान् साक्षात्कर्त्ता हर्त्ता च पालकः। नो रक्षितुं समुद्भूत[९] इमं देहं समाश्रयन् ॥२०॥
यो वन्द्यः सर्वदेवानां महेश्वरात्मको विभुः। सोऽसि त्वं केशवाऽजस्रं सर्वभूतगुहाशयः ॥२१॥
इन्द्रशब्द इति ख्यातो[१०] मेनेऽहं भवता कृतः। भ्रातृत्वेनाग्रजत्वेन स्वःपतित्वे नियोजितः[११] ॥२२॥

---

यसैगरी भगवान् कृष्णले इन्द्रलाई बहुमूल्य वस्त्र, अनेक रत्न तथा अन्य वस्त्रहरू पनि प्रदान गर्नुभयो। नमस्कार गरेपछि भगवान् कृष्णले इन्द्रलाई हातले अङ्कमाल गर्नुभयो र बारम्बार हार्दिकता प्रकट गर्दै भन्न लाग्नुभयो ॥११–१२॥

कृष्णले भन्नुभयो – हे इन्द्र ! तिम्रै अनुग्रहले गर्दा पापी शत्रुहरू मरे। कामदेव तिम्रो र देवताको तेजका कारणपापी शत्रुहरूलाई मार्न समर्थ भए। दैवीशक्ति र तिम्रो तेज पाएर नै प्रद्युम्नले पापी राक्षसहरूलाई मारे। तीनै लोकमा चारैतिर प्राणीहरू स्वस्थ भएका छन्। त्यस पापी वज्रासुरको भयका कारण सम्पूर्ण प्राणीहरू दुःखमा डुबेका थिए। तिम्रै तेजले गर्दा उनीहरूको त्यो दुःख ध्वस्त भयो र आज उनीहरू स्वस्थ बनेका छन्। हे इन्द्र ! अब तिमी स्वर्ग गएर देवताको रक्षा गर। देवताहरूका साथमा बसेर आनन्दसित राज्यको उपभोग गर ॥१३–१६॥

कार्तिक स्वामीले भन्नुभयो – भगवान् कृष्णको कुरा सुनेर हर्षविभोर भई आँसुले आँखा भिजाउँदै इन्द्रले कृष्णलाई हातले अङ्कमाल गरे। त्यसपछि मनमनै कृष्ण भगवान् नै हुनुहुन्छ भन्ने भावना राखेर प्रणाम गर्दै हर्षले गद् गद भएको स्वर निकालेर कृष्णलाई भने ॥१७–१८॥

इन्द्रले भने – हे केशव ! तीनै लोकका अधिपति भएर हजुरले मलाई यस्तो भन्न मिल्दैन। सम्पूर्ण प्राणीका लागि हजुर नित्य वन्दनीय हुनुहुन्छ। संसारको सृष्टि, स्थिति र संहार गर्ने हजुर साक्षात् भगवान् हुनुहुन्छ। हाम्रो रक्षाका लागि शरीर धारण गरेर हजुर यहाँ प्रकट हुनुभएको छ। हे केशव ! जो सम्पूर्ण देवताका लागि वन्दनीय, सम्पूर्ण प्राणीको हृदयमा नित्य वास गर्ने महान् ईश्वर र सर्वत्र व्यापक त्यो ईश्वर हजुर नै हुनुहुन्छ। इन्द्र भन्ने यो शब्द हजुरले नै बनाउनुभएको हो। हजुरले नै मलाई दाजु भनेर स्वर्गको स्वामित्व दिनुभएको हो ॥१९–२२॥

---

५. अन्यानि पूज्य तं कृष्णो दिवस्पतये संददौ, इति न.सं.पु.पाठः।
६. समार्द्रयन्मुहुर्मुहुः, इति न.सं.पु.पाठः।
७. अद्यतः सुस्थिता भूतास्तवौजोभिर्विध्वंसिताः, इति न.सं.पु.पाठः।
८. भुज्यताम्, इति न.सं.पु.पाठः।
९. नोऽत्र रक्षितुमुद्भूत, इति न.सं.पु.पाठः।
१०. इन्द्रशब्द इति ख्यातः, इति न.सं.पु.पाठः।
११. स्वः पतिः कृतया विभो, इति न.सं.पु.पाठः।

त्वमादिपुरुषो विष्णुर्भूत्वा ममानुजो ह्यपि। कृपयसि च मां भूमन् देवराजाभिधानतः ॥२३॥
एका मूर्त्तिस्त्रयो देवा ब्रह्मविष्णुमहेश्वराः। शैलूष इव देवेशस्तस्मै तुभ्यं नमो नमः ॥२४॥
पालयिष्येऽमरान्स्वर्गे तव प्रसादतोऽधुना। निष्कण्टकं सुखं भूमन् नमोऽस्तु ते व्रजाम्यहम् ॥२५॥
मानेन पौरुषेणैव गरीयान् सर्वतो भवान्[१२]। विपक्षसूदनो राम ! नतोऽस्मि तव पादयोः ॥२६॥
बलभद्र तवौजोभिर्हतेषु पापशत्रुषु[१३]। करिष्ये सुखतो राज्यं[१४] नमस्तुभ्यं व्रजाम्यहम् ॥२७॥
प्रद्युम्नार्य विभो वीर विविधकर्मभिर्बलैः[१५]। हत्वा दैत्यान् त्वया शत्रून् रक्षितञ्च[१६] त्रिपिष्टपम् ॥२८॥
ते प्रसादादहं नाकं पालयिष्यामि साम्प्रतम्[१७]। मङ्गलमस्तु ते वीर सर्वशत्रुविनाशकृत् ॥२९॥
नारद ! त्वत्कृतैः स्वर्गे पालयिष्यामि तान् सुरान्[१८]। निष्कण्टकं विनोदेन नमस्तुभ्यं व्रजाम्यहम् ॥३०॥

स्कन्द उवाच

एवं मुने जयन्तोऽपि भक्त्या कृष्णं ननाम च। परिष्वज्य ततः कामं मुदा मिथस्तथा मुहुः ॥३१॥
आरुह्य सहसा शक्र ऐरावतं गजोत्तमम्। स्वर्गसोपानशैलेन्द्रं प्रययौ त्रिदशैः सह ॥३२॥
नारदोऽपि ययौ हर्षपूर्णमनोरथो मुने। द्वारवतीञ्च गीतज्ञो वीणां प्रवादयन्मुहुः ॥३३॥
सर्वामवर्णयद्वार्तां रुक्मिणीं नारदो मुदा। तेषां नीराजनायाशु चोपदेशं ददौ पुनः ॥३४॥
एवं प्रस्थापयन् देवान् शक्रमुखान्नरान्मुनीन्। शेषाद्धि कोषतो द्रव्यं जग्राह केशवः स्वयम् ॥३५॥

---

हजुर स्वयं आदिपुरुष विष्णु हुनुहुन्छ। तैपनि मेरो भाइ बनेर ममाथि कृपा गरी मलाई देवराज बनाइदिनुभएको छ। एकमूर्ति भएर पनि हजुर ब्रह्मा, विष्णु, महेश्वर स्वरूपले तीन मूर्ति भएर रहनुभएको छ। नटुवाजस्तो स्वरूप धारण गर्ने हजुरलाई बारम्बार नमस्कार छ। हजुरकै अनुकम्पाबाट मलाई निष्कण्टक सुख प्राप्त भएको छ। अब म स्वर्गमा गएर देवताहरूको पालन गर्छु। हजुरलाई नमस्कार छ। शत्रुलाई दमन गर्न सक्ने हे बलराम ! मानले र पुरुषार्थले पनि हजुर ठूला हुनुहुन्छ। हजुरका दुबै पाउमा म प्रणाम गर्दछु ॥२३–२६॥

हे बलभद्र ! हजुरको प्रभावले त्यो पापी दैत्य र अरु शत्रुहरूसमेत मारिएका छन्। अब म स्वर्गमा आनन्दसित राज्य गर्न सक्छु। हजुरलाई नमस्कार छ, म अब जान लागें। हे प्रद्युम्न ! हे वीर ! हजुरले आफ्नो अद्भुत कर्म र सामर्थ्यले मेरा शत्रु दैत्यहरूलाई मारिदिनुभयो र स्वर्गको रक्षा गरिदिनुभयो। हजुरको अनुकम्पाले आजदेखि म स्वर्गको पालन गर्नेछु। सबै शत्रुलाई नाश गर्ने हे वीर ! हजुरको कल्याण होस्। हे नारदजी ! हजुरका पवित्र कृत्यहरूकासहयोगले अब म स्वर्गमा गएर देवताहरूलाई पालन गर्छु। हजुरको क्रियाकलापले गर्दा सबैको काँडो झिकियो, हजुरलाई नमस्कार छ, म प्रस्थान गरें ॥२७–३०॥

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! यसरी भक्तिपूर्वक भगवान्लाई प्रणाम गरेर प्रसन्न हुँदै प्रद्युम्न र इन्द्रले परस्परमा बारम्बार अङ्कमाल गरे। अनि इन्द्र तत्काल ऐरावत हात्तीमा चढे र देवताहरूलाई साथमा लिएर उनी स्वर्गको सिँढी भएर रहेको पर्वतमा उक्लिए। हे अगस्त्य मुनि ! त्यसपछि आफ्नो चाहना पूर्ण भएको हुँदा गीतगान र वाद्यवादनमा सिपालु नारद पनि प्रसन्न भएर वीणा बजाउँदै द्वारकातिर लागे। द्वारका गएर नारदले भएका सारा वृत्तान्त रुक्मिणीलाई बताए र उहाँहरूको आरती गर्न सम्झाए। यसप्रकार इन्द्रादि देवता, राजा, ऋषिमुनिहरू सबैलाई बिदा दिएर त्यो ढुकुटीमा रहेको बाँकी धन भगवान् कृष्ण आफैंले लिनुभयो ॥३१–३५॥

---

१२. सर्वतस्त्वं गरीयसः, इति न.सं.पु.पाठः।
१३. बलभद्र तवौजोभिर्हते पापेषु शत्रुषु, इति न.सं.पु.पाठः।
१४. चक्रे राज्यं सुखं स्वर्गे, इति न.सं.पु.पाठः।
१५. आश्चर्यकर्मभिर्बलैः, इति न.सं.पु.पाठः।
१६. हि मच्छत्रून् नो रक्षक, इति न.सं.पु.पाठः।
१७. रक्षयिष्ये समग्रतः, इति न.सं.पु.पाठः।
१८. नारद त्वत्कृते देवान् पालयिष्ये त्रिविष्टपे, इति न.सं.पु.पाठः।

द्रव्याणि कोषतः प्रेक्ष्य विस्मितास्तेऽपि[१९] यादवाः। नानादेशोद्भवान्याशु रत्नानि विविधानि च[२०] ॥३६॥
तद्राज्यं प्रददौ कृष्णो वैशाय पार्थिवाय च। बालवृद्धान् समाश्वास्य तत्पुरस्थान् समन्ततः ॥३७॥
ततश्च कृत्वात्मवशं पुरस्थान् विनोद्य लोकान् बुभुजे स राज्यम्।
मनोरथान् यान् स्वजनैश्च सार्द्धं स्त्रीणां गणैर्भूपवरो हि रेमे ॥३८॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे प्रद्युम्नोत्तरे शक्रप्रस्थानं नाम
सप्ताशीत्यधिकशततमोऽध्यायः ॥१८७॥

---

विभिन्न देशबाट ल्याएर जम्मा पारेको रत्नमय त्यो ढुकुटीको सम्पत्ति देख्दा यादवहरू आश्चर्यचकित भए। त्यसपछि भगवान् कृष्णले त्यहाँको राज्य सेनवंशी वैश्यराजालाई दिनुभयो। उहाँले त्यस शहरका केटाकेटी, बूढाखाडा सबैलाई अब चितिन्त हुनुपर्दैन भनेर सम्झाउनुभयो ॥३६–३७॥

त्यसपछि शहरवासीहरूलाई आनन्दित तुल्याउँदै ती वैश्य राजाले आफ्नो राज्य भोग गर्न लागे। स्वजनहरूलाई साथमा लिएर उनले मनमा जे–जे इच्छा लाग्छ, त्यसैअनुरूप रानीहरूका साथ क्रीडा गर्दै रहन थाले ॥३८॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डको प्रद्युम्नोत्तरमा इन्द्रको स्वर्गप्रस्थाननामक
एकसय सतासियौँ अध्याय पूरा भयो।

---

१९. चित्रं गताश्च, इति न.सं.पु.पाठः। २०. रत्नानां सञ्चितानि च, इति न.सं.पु.पाठः।

# अष्टाशीत्यधिकशततमोऽध्यायः

यादवानां द्वारकागमनम्

स्कन्द उवाच

एवं प्रस्थाप्य देवान् वै क्ष्मापालांश्च मुनीन् हरिः। गन्तुमियेष राज्यं स्वं दत्त्वा तस्मै पुरीञ्च ताम् ॥१॥

संहृत्य कोषतो द्रव्यं यादवेभ्यस्तदा हरिः। व्याचष्ट वचनं सद्यो द्वारकागमनाय च ॥२॥

कृष्ण उवाच

भो भ्रातः शीलधृग् राम ! आरुह्य वज्रस्यन्दनम्[1]। गदेन सह साम्बेन द्वारवती प्रगम्यताम् ॥३॥

यानेनानेन कन्दर्प पुष्पकेण प्रगम्यताम्। समास्थाय रथे पत्न्यौ मङ्गलेन विपक्षहन् ॥४॥

वासांसि स्मर रत्नानि महार्हाणि च सर्वशः। तत्रैव च समास्थाय गच्छ पुत्र ! जनैः समम् ॥५॥

रक्ष तां द्वार्वतीं पुत्र ! शत्रुतः सर्वतः सदा। मा दुःखय प्रजास्तस्यां तासु मे कुशलं वद ॥६॥

स्थास्याम्यहञ्च कन्दर्प ! मत्प्रिये दोलपर्वते। देवर्षिभिः समं तत्र पशुपतिं समर्चयन्[2] ॥७॥

प्रद्युम्न उवाच

भगवता न वक्तव्यमेतद्वाक्यं विभोऽधुना। द्वारवत्यां जनाः[3] सन्ति दर्शनाय समुत्सुकाः ॥८॥

भगवतो वियोगेन नार्यस्ताः कृशतां गताः[4]। मनसीति विधायासन् विभुः कदागमिष्यति ॥९॥

गत्वा द्वारवतीं तात समाश्वास्य पुरौकसः। आगम्यतां पुनस्तत्र यत्र पशुपतीश्वरः ॥१०॥

---

## अध्याय - १८८

यादवहरूको द्वारका आगमन

कार्तिक स्वामीले भन्नुभयो - यसरी राजा तथा ऋषिमुनि सबैलाई बिदा गरेर भगवान् कृष्णले ती वैश्यराजालाई त्यो शहर सुम्पिएर आफ्नो राज्यमा जाने विचार गर्नुभयो। भगवान् कृष्णले ढुकुटीबाट धनसम्पत्ति निकालेर यादवहरूलाई दिनुभयो र द्वारका प्रस्थान गर्ने क्रममा उनीहरूलाई भन्नुभयो ॥१-२॥

भगवान् कृष्णले भन्नुभयो - हे दाजु ! हजुर हलो धारण गरी वज्रासुरको विमानमा बस्नुहोस् अनि गद र साम्बलाई साथमा लिएर द्वारका जानुहोस्। शत्रुहन्ता हे प्रद्युम्न ! आफ्नी पत्नीलाई यस पुष्पक विमानमा राखेर मङ्गल गर्दै तिमी पनि द्वारका जाऊ ॥३-४॥

हे बाबु ! बहुमूल्य वस्त्र तथा रत्न लिएर यसै विमानमा राख र सबैलाई साथमा लिएर तिमी प्रस्थान गर। तिमीले चारैतिरबाट हुन सक्ने शत्रुको भयबाट द्वारकाको रक्षा गर र द्वारकावासी प्रजाहरूलाई कष्ट हुन नदेऊ। तिनीहरूलाई मैले सोधेको छ भनिदेऊ। हे प्रद्युम्न ! देवता तथा ऋषिहरूका साथ म यही मेरो प्यारो दोलाचल पर्वतमा भगवान् पशुपतिनाथको सेवा गरेर बस्छु ॥५-७॥

प्रद्युम्नले भन्नुभयो - हे प्रभो ! हजुरले अहिले यस्तो कुरा गर्नुहुँदैन। हजुरको दर्शनका लागि प्रजाहरू द्वारकामा उत्कण्ठित भएर बसेका छन्। हजुरको वियोगले गर्दा स्त्रीजातिहरू अत्यन्त दुःखी भएका छन्। हजुर कहिले आउनुहुन्छ भनेर उनीहरूले मनमा चिन्ता लिइरहेका छन्। त्यसैले हे पिताजी ! एकपल्ट द्वारका जाऔं। त्यहाँका बासिन्दाहरूलाई सम्झाई बुझाई हजुर फेरि पशुपतिनाथ भएको ठाउँमा फर्कनुहोला ॥८-१०॥

---

१. वज्ररथं समारुह, इति न.सं.पु.पाठः।
२. प्रसेवयन्, इति न.सं.पु.पाठः।
३. प्रजाः, इति न.सं.पु.पाठः।
४. स्त्रीणां वर्गाः सुकर्षिताः, इति न.सं.पु.पाठः।

स्कन्द उवाच

ओमिति च प्रतिश्रुत्य तथ्यं कृत्वाशु तद्वचः। आरुरोह हरिस्ताक्ष्यं गमनाय तदा मुने ॥११॥
उत्पपात पुरात्ताक्ष्यः कृष्णवाहस्तदाम्बरम्। यानानि च समुत्पेतुस्तेषु वाहेषु[५] तत्क्षणात् ॥१२॥
ययौ द्वारवतीं कृष्णस्ताक्ष्यस्थो गगनेन वै। यादवैः सह वै सार्द्धं सर्वरत्नानि चोद्वहन् ॥१३॥
आकर्ण्य स्वागतं कृष्णं यादवैःसह गोपुरात्। विनिर्ययुः जनाः शीघ्रं स्त्रियश्चार्हणपाणयः ॥१४॥
चक्रुर्नीराजनं विप्रा गर्गाद्या मुनयस्तथा। मन्त्रघोषैश्च[६] कृष्णाय चाष्टभिर्मङ्गलैर्मुहुः ॥१५॥
विप्रपत्न्यः पुनर्वृद्धा देहल्यां विविधार्हणैः। तेषां नीराजनञ्चक्रु गायन्त्यो मङ्गलं मुहुः[७] ॥१६॥
रुक्मिणी सत्यभामा च जाम्बवती तथापराः। चक्रुर्नीराजनं तेषां सर्वोपकरणैर्मुदा ॥१७॥
अवात्सीच्च सुखं कृष्णो द्वारवत्यां मुदान्वितः। रेमे ताभिः समं हर्म्ये सपुत्रः कतिचिद्दिनम् ॥१८॥
ततः समागतो भूयो दोलाद्रौ केशवो मुने। तस्थौ चाद्यापि तत्रासौ पूजयन्[८] पशुपेश्वरम् ॥१९॥
इत्येतत्कथितः तुभ्यं प्रद्युम्नविजयो मुने। नेपालस्य च माहात्म्यं जानीहि त्वं तथा मुने ॥२०॥
कौशिकीनां गण्डकीनामन्यासां सरितामपि। क्षेत्राणाञ्चैव तीर्थानां माहात्म्यं वर्णितं मया ॥२१॥
बद्रिकाश्रमशैलस्य केदारस्य तथा मुने। श्रीगह्वरस्य गङ्गाया माहात्म्यञ्चापि वर्णितम्[९] ॥२२॥
व्यासाश्रमस्य माहात्म्यं हिमेशगह्वरस्य च। मानःसरस्य माहात्म्यं बुद्धाश्रमस्य कुम्भज ॥२३॥

---

कार्तिक स्वामीले भन्नुभयो – हे अगस्त्य मुनि ! प्रद्युम्नले भनेको कुरा राम्रो हो भनेर भगवान्‌ले हुन्छ भन्नुभयो र द्वारकातिरप्रस्थान गर्न गरुडमाथि चढ्नुभयो ॥११॥

त्यसपछि सबैभन्दा पहिले कृष्ण भगवान्‌लाई बोकेर गरुड आकाशतिर उडे। अनि अन्य विमानहरू पनि आ-आफ्ना स्वामीलाई बोकेर तुरुन्तै उडे ॥१२॥ गरुडमा बस्नुभएका कृष्ण सबै रत्नहरू र यादवहरूलाई साथमा लिएर आकाशमार्गबाट द्वारका जानुभयो ॥१३॥ यादवहरूका साथमा भगवान् कृष्ण द्वारका आउन लाग्नुभयो भन्ने सुन्नासाथ त्यहाँका प्रजा र विशेष गरी स्त्रीजातिहरू हातमा पूजासामग्री लिएर शहरको ढोकाबाट बाहिर निस्किए ॥१४॥

भगवान् आएपछि गर्ग आदि ऋषिहरू तथा ब्राह्मणहरूले वेद पाठ गर्दै अष्टमङ्गलको गान गरेर भगवान्‌को बारम्बार आरती गरे ॥१५॥ त्यसपछि वृद्धवृद्धा र ब्राह्मणीहरूले पनि ढोकामा बसेर मङ्गल गाउँदै विभिन्न किसिमका पूजासामग्रीले तिनीहरूको नीराजन गरे ॥१६॥ रुक्मिणी, सत्यभामा, जाम्बवती र अन्यले पनि सबै सामग्री लिएर प्रसन्न हुँदै भगवान् कृष्णका साथै सम्पूर्ण यादवहरूको नीराजन गरे ॥१७॥ भगवान् कृष्ण पनि खुसी भएर द्वारकामा आनन्दसित बस्नुभयो। पुत्रहरूका साथमा रहेका भगवान् कृष्णले दरबारमा कैयौं दिनसम्म रानीहरूसित भोगविलास गर्नुभयो ॥१८॥

हे अगस्त्य मुनि ! त्यसपछि भगवान् कृष्ण फेरि दोलाचल पर्वतमा जानुभयो र आजसम्म पनि उहाँ त्यसै ठाउँमा बसेर भगवान् पशुपतिको सेवा गर्दै रहनुहुन्छ ॥१९॥ यसरी मैले तपाईंलाई प्रद्युम्नको विजयवृत्तान्त बताएँ र नेपालको माहात्म्य पनि निरूपण गरेँ। हे अगस्त्य ! तपाईंले पनि यसै गरी नेपालको माहात्म्य बुझ्नुपर्दछ ॥२०॥ कोशी, गण्डकी र अन्य नदीहरू, क्षेत्र तथा तीर्थहरूको पनि माहात्म्य मैले तपाईंलाई बताएँ ॥२१॥ मैले तपाईंलाई बद्री, केदार, श्रीगुफाको र त्यस्तै गङ्गाको माहात्म्य पनि बताएँ ॥२२॥ हे अगस्त्य मुनि ! व्यासाश्रम, हिमालय गुफा, मानसरोवर र वृद्धाश्रमको समेत माहात्म्य मैले तपाईंलाई भनेँ ॥२३॥

---

५. समुत्पेतुस्तानि वाहानि, इति न.सं.पु.पाठः।
६. पठन् वेदांश्च, इति न.सं.पु.पाठः।
७. तेभ्यो निराजनञ्चक्रु गीतयन्मङ्गलैर्मुहुः, इति न.सं.पु.पाठः।
८. सेवयन्, इति न.सं.पु.पाठः।
९. माहात्म्यञ्च तथाविधम्, इति न.सं.पु.पाठः।

हिमवत्सदृशं पुण्यं तपःस्थानं घटोद्भव। नास्ति नास्ति रसामध्ये चतुर्वर्गफलप्रदम् ॥२४॥
यः शृणोति नरश्रेष्ठः प्रद्युम्नविजयं शुचिम्। श्रद्दधानः सदा भक्त्या सर्वैनोभिः स मुच्यते ॥२५॥
यः पुनः परया भक्त्या विद्यां सम्पूज्य चार्हणैः। शृणोति श्रद्दधानो वै तस्य पुण्यफलं शृणु ॥२६॥
जाम्बूनदमये याने परिवारैः समं बुधः। आस्थाय प्रमथैः सम्यग् मानितो[10] बहुशो मुहुः ॥२७॥
रुद्रकन्याकरोद्धूतैश्चामरैर्वीजितो[11] मुदा। नीयते[12] गगनेनैशं वाद्यनादैर्विनोदितः ॥२८॥

माहात्म्यं वै वरहिमगिरेरद्भुतं वर्ण्यते किं[13]
यच्छृङ्गेषु प्रसभमनिशं सन्ति देवाः ससिद्धाः ॥
जामातेशो वसति मुनयो यस्य पुत्री च गौरी
चाद्याप्यार्याः क्षणमपि च पृथक्ते न मुञ्चन्ति शृङ्गम् ॥२९॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये प्रद्युम्नोत्तरे
यादवप्रत्यागमनन्नामाष्टाशीत्यधिकशततमोऽध्यायः ॥१८८॥
समाप्तोऽयं हिमवत्खण्डः, श्लोकसङ्ख्या १२,५१२ ॥

---

हे अगस्त्य मुनि ! हिमालयजस्तो पवित्र एवं धर्म, अर्थ, काम र मोक्ष, यी चारै पुरुषार्थलाई फलरूपमा दिन सक्ने तपस्या गर्ने स्थल पृथ्वीमा अन्त कतै पनि छैन, छैन। जसले श्रद्धा गरेर यो पवित्र प्रद्युम्नविजय सुन्छ, त्यो सबै पापबाट मुक्त हुन्छ। त्यस्तै जसले अत्यन्त भक्तिका साथ देवताको पूजा गरेर श्रद्धापूर्वक यो विद्याको श्रवण गर्छ त्यस व्यक्तिलाई सपरिवार प्रमथगणहरूले सुनको विमानमा राखेर सादर सत्कार गर्दै आकाशमार्गबाट शिवलोकमा लैजान्छन्। शिवकन्याहरूले उसलाई चमरले हम्कन्छन् र बाजाहरू बजाएर आनन्दित तुल्याउँछन् ॥२४-२८॥

जसका शिखरमा सिद्ध र देवताहरू सधैँ वास गरिरहेका हुन्छन्, जसका ज्वाइँ साक्षात् महादेव हुनुहुन्छ, जसकी छोरी पार्वती हुनुहुन्छ, जसको शिखरलाई आजसम्म पनि ऋषिमुनिहरूले एक क्षणपनि छोडेका छैनन्, त्यस्ता अद्भुत हिमालयको माहात्म्य म के बताऊँ ? ॥२९॥

प्रा. डा. वेणीमाधव ढकालद्वारा सम्पादित एवं नेपाली भाषामा अनूदित स्कन्दपुराणअन्तर्गतको
हिमवत्खण्डको प्रद्युम्नोत्तरमा यादवहरूको द्वारका आगमननामक
एकसय अठासियौं अध्याय पूरा भयो।

परम्बा वाग्वादिनी भगवतीको असीम अनुकम्पाबाट पोरकनी पाल्पा निवासी पतिव्रताशिरोमणि स्वर्गीय माताश्री दिव्यलक्ष्मी ढकाल र सज्जनमुकुटमणि स्वर्गीय पिताश्री चूडामणि ढकालका कनिष्ठ पुत्र नेपाल संस्कृत विश्वविद्यालय सेवा आयोगका अध्यक्ष प्रा. डा. वेणीमाधव ढकालद्वारा गरिएको महर्षि वेदव्यासरचित स्कन्दमहापुराणअन्तर्गत हिमवत्खण्डको अभिनव सम्पादन एवं नरहरिनामक नेपाली भाषानुवादमा पाशुपतक्षेत्रवर्णन प्रकरण पूरा भयो।

परम्बा वाग्वादिनी भगवतीको असीम अनुकम्पाबाट पोरकनी पाल्पा निवासी पतिव्रताशिरोमणि स्वर्गीय माताश्री दिव्यलक्ष्मी ढकाल र सज्जनमुकुटमणि स्वर्गीय पिताश्री चूडामणि ढकालका कनिष्ठ पुत्र नेपाल संस्कृत विश्वविद्यालय सेवा आयोगका अध्यक्ष प्रा. डा. वेणीमाधव ढकालद्वारा गरिएको महर्षि वेदव्यासरचित स्कन्दमहापुराणअन्तर्गत हिमवत्खण्डको अभिनव सम्पादन एवं नरहरिनामक नेपाली भाषानुवादमा हिमवत्खण्ड नामक ग्रन्थ पूरा भयो।

---

१०. सम्यगार्द्रयन्, इति न.सं.पु.पाठः।
११. ....चामरैर्व्यजयन्, इति न.सं.पु.पाठः।
१२ नियन्ते, इति न.सं.पु.पाठः।
१३. किं ब्रुमश्चाद्भुतन्तत्, इति न.सं.पु.पाठः।

# ग्रन्थान्तमङ्गलम्

## शिवाष्टोत्तरशतनामस्तोत्रम्

जयत्यनन्यसामान्यप्रकृष्टगुणवैभवः। संसारनाटकारम्भनिर्वाहणकविः शिवः ॥१॥
नमः शिवाय भूतभव्यभाविभावभाविने। नमः शिवाय मातृमानमेयकल्पनाजुषे।
नमः शिवाय भीमकान्तशान्तशक्तिशालिने। नमः शिवाय शाश्वताय भास्वराय शम्भवे ॥२॥
नमः शिवाय निर्निकेतनिःस्वभावमूर्तये । नमः शिवाय निर्विकल्पनिष्प्रपञ्चसंविदे।
नमः शिवाय निर्विवादनिष्प्रमाणसिद्धये। नमः शिवाय निर्मलाय निष्कलाय वेधसे ॥३॥
नमः शिवाय पार्थिवाय गन्धमात्रसंविदे। नमः शिवाय षड्रसाय सामरस्यतृप्तये।
नमः शिवाय तैजसाय रूपतानिरूपिणे। नमः शिवाय पावनाय सर्वभावसंस्पृशे ॥४॥
नमः शिवाय नाभसाय सत्त्वमात्राविणे। नमः शिवाय निर्गलन्मलव्ययाय पायवे।
नमः शिवाय विश्वसृष्टिसौष्ठवैकमीढुषे। नमः शिवाय सर्वतःप्रसारिपादसम्पदे ॥५॥

---

## शिवाष्टोत्तरशतनामस्तेत्र

भगवान् शम्भुलाई नमस्कार गर्दछु।

असाधारण एवं उत्कर्षको चरमसीमामा पुगेका सद्गुणको ऐश्वर्यले सम्पन्न र संसाररूप नाटकको शुभारम्भको परिकल्पना गरी त्यसलाई मञ्चन गर्न विचित्र संसाररुप नाटकको रचना गर्नुहुने कवि भगवान् शिवलाई प्रणाम गर्दछु। भूत भव्य, (वर्तमान) र भावी कालका परिमाणका म्रष्य भगवान् शिवलाई नमस्कार गर्दछु। प्रमाता, प्रमाण र प्रमेयको कल्पना गर्नुहुने, भगवान् शिवलाई नमस्कार गर्दछु। भीमरूप, सौम्यरूप र शान्तरूप धारण गरी आफ्नो अकल्पनीय शक्ति प्रकट गर्नुहुने, शाश्वत (नित्य), ज्योतिर्मय र लोककल्याणकारी भगवान् शम्भुलाई नमस्कार गर्दछु। आवासहीन र स्वभावहीन निराकार मूर्ति, शिवलाई नमस्कार गर्दछु। विकल्परहित र प्रपञ्चरहित दिव्यज्ञानका रूपमा रहनुहुने भगवान् शिवलाई नमस्कार गर्दछु। निर्विवादरूपमा प्रत्यक्ष आदि कुनै प्रमाणद्वारा सिद्ध गर्नु नपर्ने, स्वतःसिद्ध स्वयं प्रकाश भगवान् शिवलाई नमस्कार गर्दछु। निर्मल, निष्कल र जगत्प्रपञ्चका रचयिता भगवान् शिवलाई नमस्कार गर्दछु ॥१-३॥

गन्धद्वारा पहिचान गरिने पार्थिव परमाणुका रूपमा विराजमान भगवान् शिवलाई नमस्कार गर्दछु। मधुर आदि षड्रसका रूपमा रहनुहुने र महाशक्तिका साथ समानरुपमा श्रैङ्गारिक रसको अनुभव गरी सन्तर्पण प्राप्त गर्नुहुने भगवान् शिवलाई नमस्कार गर्दछु। रूपतत्त्वको पहिचान गराउने तैजस परमाणुका रूपमा विराजमान हुनुहुने भगवान् शिवलाई नमस्कार गर्दछु। स्पर्शशक्तिद्वारा सबैलाई आफ्नो परिचय प्रदान गर्ने पवनशक्तिका रूपमा विराजमान भगवान् शिवलाई नमस्कार गर्दछु ॥४॥

सत्त्वात्मक शब्दको ध्वननद्वारा आफ्नो परिचय प्रदान गर्दै आकाशीय परमाणुका रूपमा विराजमान भगवान् शिवलाई प्रणाम गर्दछु। प्रत्येक प्राणीका शरीरमा मलनिस्सारण गर्ने पायु (मलद्वार) का रूपमा रहनुहुने भगवान् शिवलाई नमस्कार गर्दछु। विश्वसृष्टिको सुस्थिति र सौन्दर्यका लागि पर्जन्य (बादल) बनेर वर्षा गरी सम्पूर्ण वृक्ष, वनस्पतिसहित धर्तीमाताको सेचन गर्नुहुने भगवान् शिवलाई प्रणाम गर्दछु। आफ्ना ज्ञासम्पदा र चरणसम्पदालाई विश्वव्यापी बनाई सर्वत्र सबैको सुरक्षा गर्नुहुने भगवान् शिवलाई नमस्कार गर्दछु ॥५॥

नमः शिवाय विश्वभागभोगयोग्यपाणये। नमः शिवाय वाचकप्रपञ्चवाच्यवाचिने।
नमः शिवाय नास्यगन्धिसर्वगन्धबन्धवे। नमः शिवाय रासनाय षड्रसोपसेविने॥६॥
नमः शिवाय चाक्षुषाय विश्वरूपसंदृशे। नमः शिवाय कृत्तिवृत्तिवस्तुमात्रसंस्पृशे।
नमः शिवाय शब्दसंविदेकहेतुरूपिणे। नमः शिवाय तद्गुणत्रयाविभागभूतये॥७॥
नमः शिवाय पूरुषाय भोक्तृताभिमानिने। नमः शिवाय सर्वतो नियन्त्रितानियामिने।
नमः शिवाय कामभेदकल्पनोपकल्पिने। नमः शिवाय किञ्चिदेव कर्तृताकलासृजे॥८॥
नमः शिवाय किञ्चिदेव वर्त्मनोपपादिने। नमः शिवाय भोग्यसर्ववर्धनोपरागिणे।
नमः शिवाय शुद्धबुद्धतत्त्वमात्ररूपिणे। नमः शिवाय दृक्क्रियाविकस्वरेश्वरात्मने॥९॥

---

विश्वका नरनारीहरूको कर्मपरम्पराअनुसार उनको भागमा परेको भोगयोग्य पदार्थ आफ्ना वरदहातमा राख्नुहुने भगवान् शिवलाई नमस्कार गर्दछु। फेरि वाचक शब्दहरूको भण्डार खडा गरी आफूलाई तिनै वाचकको अर्थका रूपमा उँभ्याउनुहुने भगवान् शिवलाई प्रणाम गर्दछु। गन्धको ज्ञाता नासिकाद्वारा सकल संसारका गन्ध ग्रहण गरी ती गन्धका बन्धुका रूपमा रहनुहुने भगवान् शिवलाई नमस्कार गर्दछु॥६॥

चक्षु इन्द्रियका अधिष्ठाता बनेर एकैपटकमा विश्वको स्वरूप राम्ररी साक्षात्कार गर्नुहुने भगवान् शिवलाई नमस्कार गर्दछु। रूपरहित तर स्पर्शवान् वायुको रूपमा रही चर्मद्वारा आच्छादित प्राणीहरूको शारीरिक संरचनाको स्वरूपबोध गर्न चर्ममात्र स्पर्श गरी त!वबोध गर्नुहुने भगवान् शिवलाई प्रणाम गर्दछु। शब्दब्रह्मको परिज्ञान गराउने एकमात्र कारणका रूपमा रहनुभएका भगवान् शिवलाई प्रणाम गर्दछु। फेरि तीन गुणबाट पर रहनुभए पनि प्रकृतिसम्मत व्यवहार सञ्चालनका लागि प्रकृतिकै रूपमा उपस्थित भई तीनै गुणभित्र गुणक्रियाका रूपमा देखा पर्नुहुने भगवान् शिवलाई नमस्कार गर्दछु॥७॥

आफू अभोक्ता हुनुभए पनि मायाको साहचर्यमा रही पुरुषको भोगको लागि रचिएकी प्रकृतिलाई भोग गर्न भोक्ताको लीला गर्नुहुने पुरुषरूप शिवलाई नमस्कार गर्दछु। सबै प्रकारबाट मर्यादा र अनुशासनमा रहेका सज्जनहरूलाई आफूखुसी साधना र पुरुषार्थका गतिविधि गर्न कत्ति पनि नियन्त्रणमा नराख्नुहुने भगवान् शिवलाई म नमस्कार गर्दछु। प्रत्येक व्यक्तिको मनमा कामनाका अनेक भेद पैदा गरी उनीहरूलाई भोगकल्पनाको जालमा फँसाउनुहुने यद्वा भोगका अनेक प्रपञ्चको चिन्तनमा लगाउनुहुने भगवान् शिवलाई प्रणाम गर्दछु। म प्रकृति साहचर्यका कारण अलिकति मात्र आफूभित्र कर्तापनको कलाको सिर्जना गर्नुहुने धेरैजसो निराकार, निरञ्जन, निर्गुण सच्चिदानन्दघन परमात्माको रूपमा विराजमान हुनुहुने भगवान् शिवलाई नमस्कार गर्दछु॥८॥

भोगपद्धतिबाट अगाडि बढी भोगकै लागि सकाम कर्मको मार्ग अवलम्बन गर्नेहरूलाई भोग जुटाइदिएर क्षणिक तुष्टि प्रदान गर्नुहुने भगवान् शिवलाई प्रणाम गर्दछु। संसारका मानिसहरूको ठूलो संख्यालाई भोगप्राप्तिका निमित्त साधना उपासनामा तत्पर भएको जानेर भोगबाट नै चरम वैराग्य जगाउने उद्देश्यले नाना थरी भोग्य वस्तुहरूको वृद्धि गराउन तत्पर हुनुहुने भगवान् शिवलाई प्रणाम गर्दछु। प्रकृतिका विकार र प्रकृतिबाट पनि मुक्त हुनुभएकाले शुद्ध ब्रह्मका रूपमा विराजमान हुनुभएका र चित्ततत्त्वको जागरूकताका कारण चिन्मयत!वको रूपमा रूपकल्पना गरी आराधनाका विषय बन्नुहुने भगवान् शिवलाई प्रणाम गर्दछु। सकल जगत्मा करुणामय दृष्टि प्रसार गरी आफ्नो वास्तविक एवं ज्योतिर्मय ऐश्वर्य र ईश्वरात्मकता व्यक्त गर्नुहुने भगवान् शिवलाई प्रणाम गर्दछु॥९॥

नमः शिवाय सर्वविक्प्रभो सदाशिवाय ते। नमः शिवाय वाच्यवाचकार्थषट्कवित्तये।
नमः शिवाय सर्वमन्त्रसत्पदोपपादिने। नमः शिवाय पञ्चधा कलाप्रपञ्चपञ्चिने ॥१०॥
नमः शिवाय सौरजैनबौद्धशुद्धभोगिने। नमः शिवाय भक्तिमात्रलभ्यदर्शनाय ते।
नमः शिवाय सर्वतो गरीयसां गरीयसेनमः शिवाय सर्वतो महीयसां महीयसे ॥११॥
नमः शिवाय सर्वतः स्थवीयसां स्थवीयसे। नमः शिवाय तुभ्यमस्त्वणीयसामणीयसे।
नमः शिवाय मन्दराद्रिकन्धराधिशायिने। नमः शिवाय जाह्नवीजलोज्ज्वलाभिजूटिने ॥१२॥
नमः शिवाय बालचन्द्रचन्द्रिकाकिरीटिने। नमः शिवाय सोमसूर्यवह्निमात्रनेत्र ते।
नमः शिवाय कालकूटकण्ठपीठसुश्रिये। नमः शिवाय धर्मरूपपुङ्गवध्वजाय ते ॥१३॥
नमः शिवाय भस्मधूलिशूलिने त्रिशूलिने। नमः शिवाय सर्वलोकपालिने कपालिने।
नमः शिवाय दैत्यगर्वमर्दिने कपर्दिने। नमः शिवाय नित्यनम्रनाकिने पिनाकिने ॥१४॥

---

हे प्रभु ! हजुर सर्वज्ञ हुनुहुन्छ, सर्वदा कल्याण गर्ने हजुर सदाशिवलाई नमस्कार गर्दछु। वाच्य र वाचकका रूपमा रहेका ॐकारका सम्पादक अ उ म यी तीन अक्षरद्वारा जानिनुहुने भगवान् शिवलाई नमस्कार गर्दछु। करोडौं मन्त्रहरूका बीजमन्त्रका रूपमा रहनुभएका भगवान् शिवलाई नमस्कार गर्दछु। सद्योजात, अघोर, तत्पुरुष, वामदेव र ईशान नामले विराजमान आफ्ना पाँच मुखद्वारा समग्र शाम्भवी कलाको विस्तार गर्नुहुने अथवा गणेश, विष्णु, सूर्य, शिव र शक्तिरूप पञ्चब्रह्मको रूपमा रही जगत्को रक्षा गर्नुहुने भगवान् शिवलाई नमस्कार गर्दछु ॥१०॥

श्री सूर्यका उपासक सौर, श्रीबुद्धका उपासक बौद्ध, श्री जिनका उपासक जैन, शुद्ध ब्रह्मका उपासक ब्रह्मवादी वैदिक एवं मायाप्रपञ्चमा रुमल्लिएका मानिसहरूको उद्धार गर्न मायाको भोग गर्दै राम, कृष्णका रूपमा अवतार लिनुहुने भगवान् शिवलाई नमस्कार गर्दछु। भक्तहरूद्वारा आत्मसमर्पणपूर्वक शुद्ध भक्तिबाट मात्र दर्शन पाउन सकिने सदा शिवलाई मस्कार गर्दछु। सबै गुरुगम्भीर पदार्थभन्दा गौरवशाली सदाशिवलाई नमस्कार गर्दछु। सबै महान् पदार्थभन्दा पनि अतिशय महान् स्वरूपद्वारा सुहाउनुहुने भगवान् सदाशिवलाई नमस्कार गर्दछु ॥११॥

सम्पूर्ण स्थिर पदार्थहरूभन्दा पनि परम स्थिर भई विराजमान हुनुभएका सदाशिवलाई नमस्कार गर्दछु। अणुभन्दा पनि सानो सूक्ष्माणुका रूपमा रहनुहुने सदाशिवलाई नमस्कार गर्दछु। मन्दराचलको बीच भागमा सानन्द शयन गर्नुहुने सदाशिवलाई नमस्कार गर्दछु र गङ्गाजीको जलधाराका कारण अत्यन्त उज्ज्वल जटाजूट धारण गर्नुहुने सदाशिवलाई नमस्कार गर्दछु ॥१२॥

बालचन्द्रको चाँदनीद्वारा उज्ज्वल स्वरूपलाई मुकुटका रूपमा धारण गर्नुहुने शिवलाई नमस्कार गर्दछु। सूर्य, चन्द्रमा र अग्निलाई आफ्ना तीन नयनका रूपमा धारण गर्नुहुने सदाशिवलाई नमस्कार गर्दछु। जगत्को कल्याणका लागि कालकूट विषपान गरी नीलकण्ठ बनेर कण्ठपीठमा शोभामय नीलिमा धारण गर्नुहुने सदाशिवलाई नमस्कार गर्दछु। आफ्नो ध्वजामा धर्मावतार वृषभको चिह्न धारण गर्नुहुने भगवान् शिवलाई नमस्कार गर्दछु ॥१३॥

विभूतिको सेतो धूलोलाई सम्पूर्ण पापहरूलाई काट्ने परमौषधिका रूपमा धारण गर्नुहुने त्रिशूलधारी भगवान् शिवलाई नमस्कार गर्दछु। सम्पूर्ण भुवनहरूका पालक र हातमा खप्पर धारण गर्नुहुने भगवान् सदाशिवलाई नमस्कार गर्दछु। महाबली दैत्यहरूको बलको घमण्डलाई चूर्ण चूर्ण तुल्याउनुहुने जटाजूटधारी शिवलाई नमस्कार गर्दछु। स्वर्गादिलोकमा रहने देवताहरूद्वारा नम्र भई आराधना गरिनुहुने पिनाकधारी सदाशिवलाई नमस्कार गर्दछु ॥१४॥

नमः शिवाय नागराजहारिणे विहारिणे। नमः शिवाय शैलजाविलासिने सुखासिने।
नमः शिवाय मन्मथप्रमाथिने पुरप्लुषे। नमः शिवाय कामदेहदाहयुक्तिकारिणे॥१५॥
नमः शिवाय नागकृत्तिवाससेऽप्यवाससे। नमः शिवाय भीषणश्मशानभूमिवासिने।
नमः शिवाय पीठशक्तिपीठकोपभेदिने। नमः शिवाय सिद्धमन्त्रयोगिनेवियोगिने॥१६॥
नमः शिवाय सर्वदृक्चतुर्नयाधिकारिणे। नमः शिवाय सर्वतीर्थतीर्थताभिधायिने।
नमः शिवाय साङ्गवेदतद्विचारचारवे। नमः शिवाय षट्पदार्थषोडशार्थवादिने॥१७॥
नमः शिवाय सांख्ययोगपञ्चरात्रपञ्चिने। नमः शिवाय भक्तिमात्रसंस्तुताय शूलिने।
नमः शिवाय विष्णवे नमः शिवाय जिष्णवे। नमः शिवाय धन्विने नमः शिवाय खड्गिने॥१८॥
नमः शिवाय चर्मिणे नमः शिवाय वर्मिणे। नमः शिवाय कर्मिणे नमः शिवाय धर्मिणे।
नमः शिवाय भामिने नमः शिवाय कामिने। नमः शिवाय योगिने नमः शिवाय भोगिने॥१९॥

---

नागराज वासुकिलाई कण्ठमा धारण गर्दा अत्यन्त सुन्दर देखिनुहुने र भगवती महामायाका साथ नित्य विहारलीला गर्नुहुने भगवान् शिवलाई नमस्कार गर्दछु। कैलासपर्वतमा सुखासनमा विराजमान भई भगवती हिमालयनन्दिनी पार्वतीका साथ भोगविलास गर्नुहुने सदाशिवलाई नमस्कार गर्दछु। तपस्यामा विघ्न रचाउनुहुने, कामदेवलाई खरानी तुल्याउनुहुने र त्रिपुरको विनाश गर्नुहुने सदाशिवलाई नमस्कार गर्दछु। यसैगरी कामदेवलाई खरानी तुल्याउन तेस्रो आँखाको उद्घाटन गर्ने जुक्ति जुराउनुहुने भगवान् शिवलाई नमस्कार गर्दछु॥१५॥

नित्य, निराकार, निर्गुण र निरञ्जन भई दिगम्बररूपमा रहनुहुने भएतापनि संसारको कल्याणका लागि साकार बन्नुहुँदा गजचर्म धारण गर्नुहुने भगवान् शिवलाई नमस्कार गर्दछु। मानिसहरूलाई संसारको अनित्यता बोध गराउन मानवजीवनको अन्तिम गति मसानघाटमा बस्नुहुने भगवान् शिवलाई नमस्कार गर्दछु। उपासकहरूको कल्याण गर्न शिवशक्तिस्वरूप भई कहीं शिवधाम र कहीं शक्तिधाम खडा गरी विराजमान हुनुहुने भगवान् शिवलाई नमस्कार गर्दछु। आफू संसारदेखि विरक्त र एकान्तवासी हुनुभएतापनि पञ्चाक्षरीमन्त्र आदि अनेक सिद्धमन्त्रको जप गरी उपासना गर्दा भक्तहरूलाई योगशक्तिबाट दर्शन दिनुहुने भगवान् शिवलाई नमस्कार गर्दछु॥१६॥

संसारको चारैतर्फ दृष्टि लगाई धर्म, अर्थ, काम र मोक्षका अधिकारी बन्न चाहने उपासकको पात्रता, भावना र प्रयोजनअनुसार उनीहरूमध्ये धर्मका आकाङ्क्षीलाई धर्ममा, अर्थका आकाङ्क्षीलाई अर्थमा, कामका आकाङ्क्षीलाई काममा र मोक्षका आकाङ्क्षीलाई मोक्षमा प्रवृत्त गराउनुहुने चारै पुरुषार्थका अधिपति भगवान् शिवलाई नमस्कार गर्दछु। सकल पुण्यतीर्थ, सद्गुरु गङ्गा आदि नदीहरूलाई आफ्नो उपस्थिति र प्रभावद्वारा आदर्शतीर्थको रूप प्रदान गर्नुहुने भगवान् शिवलाई नमस्कार गर्दछु। व्याकरण, ज्यौतिष, शिक्षा, कल्प, छन्द र निरुक्तनामक वेदाङ्गसहित वेदका रूपमा रहनुहुने र विद्यामूर्ति बनेर वेदाङ्गसहित वेदको अध्ययन, मनन गर्दा अत्यन्त सुन्दर देखिनुहुने भगवान् शिवलाई नमस्कार गर्दछु। भक्तलाई द्रव्य, गुण, कर्म, समवाय, सामान्य र विशेषनामक ६ पदार्थ र १६ किसिमका प्रमेयको तात्पर्यबोध गराउनुहुने भगवान् शिवलाई नमस्कार गर्दछु॥१७॥

संसारको कल्याणका लागि सांख्यदर्शन, योगदर्शन र पाञ्चरात्र (वैष्णव) दर्शनको विस्तार गर्नुहुने शिवलाई नमस्कार गर्दछु। निर्मल भक्तिभावनाले स्तुति गर्दामात्र उत्तम स्तुति हुन जाँदा प्रसनन हुनुहुने त्रिशूलधारी शिवलाई नमस्कार गर्दछु। विष्णुका रूपमा वा कृष्णका रूपमा प्रकट हुनुहुने र इन्द्रियजयी महापुरुष वा कृष्णका सखा अर्जुनका रूपमा लीला गर्नुहुने भगवान् शिवलाई नमस्कार गर्दछु। धनुर्धारी रुद्रको रूपमा र खड्गधारी वीर रुद्रको रूपमा लीला गर्नुहुने भगवान् शिवलाई नमस्कार गर्दछु॥१८॥

दानव एवं असुहरूको दलन गर्न युद्धमा जाँदा ढाल-तरवार र कवच धारण गर्नुहुने भगवान् शिवलाई नमस्कार गर्दछु। उत्तम कर्मका र उत्तम धर्मका पालक भगवान् शिवलाई नमस्कार नमस्कार गर्दछु। दीप्तओज र आवश्यकताअनुसार प्रचण्डक्रोधका साथ देखिनुहुने र संसारका नानाथरी विघ्न निवारण गर्न एवं तारकासुरजस्ता दुष्ट दानवको दलन गर्न सत्पुत्र पैदा गर्ने उद्देश्यले कामत|व अँगालेर महामाया भगवती पार्वतीका साथ विहार गर्नुहुने भगवान् शिवलाई नमस्कार गर्दछु। महायोगको चरम सोपान समाधिमा निश्चल भई रहनुहुने र देवताहरूको प्रार्थनाअनुसार समाधि छाडी भगवती पार्वतीका साथ भोगविलास गर्नुहुने भगवान् शिवलाई नमस्कार गर्दछु॥१९॥

नमः शिवाय तिष्ठते नमः शिवाय गच्छते। नमः शिवाय हेतवे नमः शिवाय सेतवे।
नमः शिवाय सर्वथा नमः शिवाय सर्वदा। नमः शिवाय सर्व ते नमः शिवाय सर्वशः ॥२०॥
नमः शिवाय भव ! शर्व ! रुद्र ! हर ! शङ्कर ! भूतपते !! गिरिश ! भर्ग ! शशिशेखर ! नीलगल !।
त्रिनयन ! वामदेव ! गिरिजाधव ! माररिपो !। जय देवदेव ! भगवन् ! भवतेऽस्तु नमः ॥२१॥

एतामष्टोत्तरशतनमस्कारसंस्कारपूतां भूतार्थव्याहृतिनुतिमुमानाथगाथां प्रसन्नाम्।
नन्दिप्रोक्तां यमनियमतो भक्तिभाजां नराणाम्। सायं प्रातर्भवति पठतामीप्सितार्थस्य सिद्धिः ॥२२॥

इति श्रीव्यासाय नन्दिना प्रोक्तं शिवाष्टोत्तरशतनामस्तोत्रं शिवम् ॥

---

कोटि कोटि रुद्रका रूपमा जगत्मा स्थिर भई रहनुहुने शिवजीलाई नमस्कार गर्दछु र कोटि कोटि रुद्रका रूपमा जगत्मा गतिशील हुनुहुने भगवान् शिवलाई नमस्कार गर्दछु। संसारको उत्पत्ति, पालन र सदाचारका प्रमुख कारणका रूपमा रहनुहुने भगवान् शिवलाई नमस्कार गर्दछु र संसारका भक्तहरूलाई संसारसागर पार गर्ने सेतुका रूपमा रहनुभएका भगवान् शिवलाई नमस्कार गर्दछु। म सबै अवस्थामा रहनुहुने भगवान् शिवलाई नमस्कार गर्दछु र नित्य–निरन्तर भगवान् शिवलाई नमस्कार गर्दछु। हे सर्वव्यापक सदाशिव ! हजुर सदाशिलाई नमस्कार गर्दछु। म सर्वतोभावेन शिवलाई नमस्कार गर्दछु ॥२०॥

हे भव ! हे शर्व ! हे रुद्र ! हे हर ! हे शङ्कर ! हे भूतिपति सदाशिव ! म सधैं कल्याणरूपमा रहनुहुने हजुरलाई नमस्कार गर्दछु। हे गिरिशायी ! हे भर्ग ! हे चन्द्रमौलि ! हे नीलकण्ठ ! हे त्रिलोचन ! हे वामदेव ! हे गिरिजापति ! हे कामरिपु ! हे देवदेव ! हे भगवान् ! हजुरको जय होस्। म हजुरलाई नमोवचन अर्पण गर्दछु र म सदाशिव हजुरलाई नमस्कार गर्दछु ॥२१॥

१०८ नमस्कारवचनको संस्कार गरिएका कारण अत्यन्त पवित्र र लीलामय कर्मलाई ॐ भूर्भुवः स्वः नामक व्याहृतिसमान प्रयोग गरी गरिने वन्दनामा अभिव्यक्त पार्वतीपति भगवान् शङ्करको निर्मल गाथा नन्दीले वेदव्यासलाई बताएका छन्। यो उमानाथको गाथालाई सायंकाल र प्रातःकालमा जप गर्ने मानिसको मनले चिताएको इच्छा परिपूर्ण हुन्छ ॥२२॥

नन्दीले व्यासलाई उपदेश गरेको शिवको १०८ नामको माला पूर्ण भयो ॥

ॐ नमः शिवाय।

समाप्तोऽयं हिमवत्खण्डः

श्लोकसङ्ख्या : १२९०३

# १. आरम्भमङ्गलम्

गण्डकीस्तोत्रम्

(शङ्कराचार्यद्वारा रचित यो गण्डकीस्तोत्र संस्कृतस्तुतिसाहित्यमा ज्यादै महनीय मानिएको छ। यस स्तोत्रमा गण्डकी र भागीरथी दुबैलाई समान महत्त्वका नदी भनेर प्रशंसा गरिएको छ।)

समस्ताघहारि प्रभूतं मुरारेश्च्युतं गण्डयुग्मात्स्वतः स्वेदरूपम्।
त्वदीयं जलं ये पिबन्ति प्रसन्नं शुभं गण्डकि प्राणिनस्ते हि धन्याः॥
त्वदीयां स्तुतिं को विधातुं समर्थो विना नारदं तुम्बुरुं वापि लोके।
क्षमस्वाम्ब धाष्ट्र्यं ममैतत्त्वदीया स्मृतिर्मामियं प्रेरयत्येव नूनम्॥
सुरापानतो लेभिरे येऽमरत्वं सुरास्तेपि भीताः सदाकालतो वै।
त्वदम्भःसुधां ये पिबन्ति प्रसन्नां न तेषां हि भीतिः कथञ्चित् कदाचित्॥
नरो वानरः कुञ्जरो वा खरो वा चरः स्थावरो भूचरः खेचरो वा।
मृतस्त्वत्तटे याति वैकुण्ठलोके चतुर्बाहुयुक्तो मुदा पीतवासाः॥
अहो देवि धन्यासि वैकुण्ठनाथस्त्वदन्तर्गतो यच्छिलाचक्ररूपः।
शिलाचक्ररूपो मुरारिर्हि साक्षान्नवा तत्र कार्या नृभिर्ग्रावबुद्धिः॥
सुवृत्तां सुचक्रां शिलामञ्जनाभां जना भाग्यवन्तः कदाचिल्लभन्ते।
हरिं वा हरं वा मृडानीं हि तस्यां धिया भावयन्तः कृतार्था हि ते स्युः॥
त्वदन्तर्गतो यो हरिश्चक्रगर्भो न तस्यापि वक्तुं फलं पूजनादेः।
समर्थो भवेत् कोऽपि मातस्त्वदम्भस्यपारा कथा मज्जतां सज्जनानाम्॥
अशेषं जगद् गर्भगं यस्य विष्णोः स ते गर्भगश्चक्रगर्भोऽप्यनन्तः।
अनन्तानि तीर्थान्यतः सन्ति गर्भे त्वदीये न चात्रास्ति कश्चिद् विचारः॥
रवीन्दुग्रहे त्वं कुरुक्षेत्रपुण्या सदा माघमासे प्रयागेण तुल्या।
पितृश्राद्धकाले गया पुण्यदात्री मृतौ काशिका मुक्तिदात्री प्रसिद्धा॥
त्वमेवासि गङ्गा तरङ्गाभिरम्या कलिन्दात्मजा त्वं कलेर्दोषहन्त्री।
स्तुता नर्मदा शर्मदा देववृन्दैः स्तुता गोमती गौतमादिस्तुता त्वम्॥
नमस्ते नमस्तेऽमृताम्भःप्रवाहे नमस्ते नमस्ते जनानां शरण्ये।
नमस्ते नमस्ते जगन्मुक्तिहेतो नमस्ते नमस्ते जगन्नाथगर्भे॥
त्वदन्यासु धन्या धुनी कास्ति पुण्या विना विष्णुपादोद्भवां जह्नुकन्याम्।
उभे पुण्यतोये तटिन्यौ हि धन्ये शुभा गण्डकी वैष्णवी चापि गङ्गा॥
रमाहैमवत्योर्न चास्त्येव भेदस्तथा पुण्यधुन्योरपीह प्रभेदः।
द्वयोरन्तरं नैव पश्यन्ति विज्ञा वशिष्ठादयो ये मुनीनां वरिष्ठाः॥
भुजङ्गप्रयातं पठेद्यस्तु भक्त्या ध्रुवं गण्डकीगङ्गयोः स्नानपुण्यम्।
लभेत् पादपद्मे समाधाय चित्तं मुरारेः प्रसन्नं प्रपन्नार्तिहर्तृ॥
हरिगण्डसमुद्भूते सुरासुरनमस्कृते। अघौघशमने देवि पापं मे हर गण्डकि॥
इति श्रीगण्डकीस्तोत्रं सम्पूर्णं शुभम्॥

ॐ शिवाय नमः ।

# २. गण्डकीक्षेत्रमाहात्म्यम्[1]

## (पारकोटक्षेत्रमाहात्म्यम्)

श्रीगणेशाय नमः । श्रीगण्डक्यै नमः ।

श्रीभगवच्छर्मोवाच

हेतवे जगतामेव संसारार्णवसेतवे । प्रभवे सर्वविद्यानां शम्भवे गुरवे नमः ॥
नारायणं नमस्कृत्य नरञ्चैव नरोत्तमम् । देवीं सरस्वतीं व्यासं ततो जयमुदीरयेत् ॥
ब्रह्मन् ! केन प्रकारेण कर्तव्यं हरिमन्दिरम् । कस्मिन् स्थाने कदा केन किं फलं सर्वमुच्यताम् ॥१॥

श्रीकाशीराम उवाच

सुतीर्थे सुमुहूर्ते च कर्तव्यं हरिमन्दिरम् । अनन्तफलमुक्तञ्च पुराणेषु द्विजोत्तम ! ॥२॥

श्रीभगवच्छर्मोवाच

प्रयागादीनि तीर्थानि कलिनोपद्रुतानि च । यत्रास्ति निर्भयं स्थानं तत्तीर्थं ब्रूहि शोभनम् ॥३॥

श्रीकाशीराम उवाच-

गण्डक्योरन्तराले च महातीर्थे प्रकीर्तितम् । दशयोजनविस्तारं गण्डकीगर्भसंज्ञकम् ॥४॥
मत्स्यपुच्छाचलाग्राच्च गण्डक्योः सङ्गमावधिः । तत्र यत् क्रियते कार्यमनन्तफलदं स्मृतम् ॥५॥
विष्णुगण्डसमुद्भूते कृष्णाशुक्ले सरिद्वरे । वेदेऽपि श्रूयते चेति सितासिते सरिद्वरे ॥६॥
वाराहादिपुराणेषु श्रीमद्भागवतेऽपि च । माहात्म्यं दृश्यते विप्र ! गण्डक्या मुक्तिदायकम् ॥७॥

श्रीभगवच्छर्मोवाच

वाराणस्यादितीर्थानां माहात्म्यं ग्रन्थविस्तरात् । कथितं मुनिभिर्ब्रह्मन् ! गण्डक्या नैव तादृशम् ॥८॥
संशयोऽयं महान् मेऽत्र हृदिस्थो छिन्धि तत्वतः ।यथामे गण्डकी भक्तिर्मानसे स्यात् सुनिश्चला ॥९॥

---

### प्रथम अध्याय – पारकोटक्षेत्रको महिमा

श्रीभगवत् शर्मा भन्दछन् – हे ब्राह्मणदेव ! कुन ठाउँमा, कहिले र कसरी विष्णुको मन्दिर बनाउन हुन्छ र त्यसको फल कस्तो हुन्छ मलाई सबै कुरा बताउनुहोस् ॥१॥ –

श्रीकाशीराम भन्दछन् – हे श्रेष्ठ ब्राह्मण ! असल तीर्थमा, उत्तम सयममा विष्णुको मन्दिर बनाउन उपयुक्त हुन्छ पुराणहरूमा विष्णुमन्दिर निर्माण गरेको फल अनन्त बताइएको छ ॥२॥

श्रीभगवत् शर्मा भन्दछन् – प्रयाग आदि तीर्थ कलिले व्याप्त भएका छन् । पृथ्वीमा जुन ठाउँमा कुनै डर हुँदैन, त्यस्तो तीर्थ कुन हो ? मलाई भन्नुहोस् ॥३॥

श्रीकाशीराम भन्दछन् त्रिशूली र काली गण्डकीहरूको बीचमा गण्डकीगर्भ नाम गरेको १० योजन अर्थात् ४० कोस फैलिएको महातीर्थ रहेको छ । माछापुच्छ्रे हिमालयदेखि त्रिशूली र कालीगण्डकीको सङ्गम देवघाटसम्मको क्षेत्रलाई गण्डकीगर्भ भनिन्छ । त्यस महातीर्थमा गरिने प्रत्येक धर्मसम्बन्धी कार्यलाई अनन्त फलदायक मानिएको छ । विष्णुको गालाबाट उत्पन्न भएका कालो र सेतो वर्ण भएका कृष्णा र शुक्ला नाम गरेका दुई श्रेष्ठनदीहरूभएको विषय वेदमा पनि बताइएको छ ॥४–६॥

हे विप्र ! वाराह आदि पुराण र श्रीमद्भागवतमहापुराणमा पनि गण्डकीको मुक्तिदिने माहात्म्य बताइएको छ ॥७॥

श्रीभगवत् शर्मा भन्दछन् – हे ब्राह्मण ! ऋषिहरूद्वारा जसरी वाराणसी आदि तीर्थहरूको महिमा ग्रन्थहरूमा विस्तार पूर्वक बताइएको छ, त्यसरी गण्डकीको महिमा बताइएको छैन । जसरी मेरो मनमा गण्डकीको भक्ति स्थिर हुन सक्छ त्यसरी नै यस विषयमा मेरो हृदयमा रहेको ठूलो सन्देह पूर्ण रूपमा निवारण गर्नुहोस् ॥८–९॥

 श्री योगी नरहरिनाथद्वारा वि.सं. २०१३ मा सम्पादन गरी प्रकाशित हिमवत्खण्डको परिशिष्टमा प्रस्तुत गण्डकीमाहात्म्यलाई प्रा. डा. गोविन्द सुवेदीले सम्पादन गर्नुभएको थियो । परिशिष्टमा निहित उहाँको महत्त्वपूर्ण कृतिलाई प्रा. डा. टीकाराम अधिकारीद्वारा पुनः सम्पादनका साथ अनुवाद गराई महेन्द्र संस्कृतविश्वविद्यालयले वि. सं. २०५६ मा प्रकाशित गरेको थियो । प्रा. डा. अधिकारीको उक्त ग्रन्थका आधारमा त्यहाँ रहेको खण्डित अंशलाई पूरा गरी उहाँले गरेको अनुवादबाट समेत साभार सहयोग ग्रहण गर्दै यस कृतिको सम्पादन एवं अनुवाद गरेर यहाँ प्रस्तुत गरिएको छ । योगीजीले श्रमपूर्वक खोज गरी प्रस्तुत गर्नुभएको मूलपाठलाई यथोचित संशोधन तथा अनुवादसहित प्रस्तुत गर्न पाएकोमा सम्पादकलाई सन्तोष र सम्मोदको अनुभूति भएको छ ।

श्रीकाशीराम उवाच

काशी शिवपुरी विप्र ! शम्भोः प्रियतमा मता । अतो ब्रह्मादयो देवा कदाचित् कार्यगौरवात् ॥१०॥
गच्छन्ति रुद्रप्रीत्यर्थं तत्र कुर्वन्ति सत्क्रियाः ।स्थापनं शिवलिङ्गस्य कूपवाप्यादिवर्धनम् ॥११॥
तत्तल्लिखन्ति कवयो जायते ग्रन्थविस्तरः । तथा मधुपुरी विष्णोः प्रयागो ब्रह्मणस्तथा ॥१२॥
गण्डकी सर्वदेवानां जननी जन्मभूमिका । नित्यानन्दकरी नित्या नित्यमुक्ततनुप्रदा ॥१३॥
तद्गर्भे संस्थिता देवाः शालग्रामस्वरूपिणः । नित्यमुक्ता वसन्त्यत्र मुक्तिक्षेत्रे समागताः ॥१४॥
अतः सर्वे सुरा विप्र ! गण्डकीपुत्रपौत्रकाः । तषां निवासस्थानानि तीर्थानि यानि भूतले ॥१५॥
वेदशास्त्रादिकं सर्वं माहात्म्यं हि हविर्भुजाम् । एतन्महिम्ना गण्डक्या जायते सर्वथा द्विज ! ॥१६॥
अतः सर्वेषु तीर्थेषु पूजयेद् गण्डकीशिलाः । सर्वैर्वेदादिभिर्मन्त्रैरर्चयेद् गण्डकीशिलाः ॥१७॥
लोकवेदपुराणेषु प्रसिद्धा गण्डकी सदा । शालग्रामप्रभावेण प्राप्या सर्वत्र सर्वदा ॥१८॥
यानि चान्यानि तीर्थानि विघ्नराजप्रभावतः । प्रकाश्यन्ते विलुप्यन्ते धर्माधर्मवशात् क्रमात् ॥१९॥
अतस्तेषां प्रकाशार्थं माहात्म्यं विस्तराद् बुध ! प्रकल्प्यते युगापाये लोकानां हितकारिणाम् ॥२०॥
गण्डकीमहिमानं को लोके लोपयितुं क्षमः ? । भूधरस्य यथा भानोर्विष्णोर्विश्वसृजो द्विज ! ॥२१॥
स्वतः प्रसिद्धं माहात्म्यमेषां किं ग्रन्थविस्तरैः ? । माहात्म्यमन्यदेवानां दृश्यते ग्रन्थविस्तरात् ॥२२॥
तथैव सर्वतीर्थानां माहात्म्यं विस्तराद् बुधैः । कृतमस्ति न गण्डक्याः प्रसिद्धायाः सदा तथा ॥२३॥
प्रसिद्धा गण्डकी लोके प्रत्यक्षादिप्रमाणकैः । गण्डकी गोमती गोदा गङ्गा च गौतमी नदी ॥२४॥
पञ्च नद्यः प्रशस्यन्ते भुक्तिमुक्तिप्रसाधने । एतासां सन्निधिं प्राप्य किं तीर्थान्तरचिन्तनैः ॥२५॥
अत्रैव देवकार्याणि पितृकार्याणि वै द्विज ! कर्तव्यं च यथाशक्त्या धर्मार्जितधनैर्नरैः ॥२६॥
एकदा प्रथमे कल्पे कस्याज्ञां शिरसा दधत् । पुलहो नाम ब्रह्मर्षिः पुलस्त्योऽपि महानृषिः ॥२७॥
सृष्ट्यर्थं गण्डकीतीरे जग्मतुर्भ्रातरावुभौ । कृत्वाश्रमपदं तत्र चक्रतुस्तौ महत्तपः ॥२८॥
तत्क्षेत्रस्य प्रभावेण सिद्धौ तौ च बभूवतुः । कदाचिद् भरतो नाम राजर्षिर्मनुवंशजः ॥२९॥
गण्डकीतटमाश्रित्य नारायणमनुस्मरन् । मुक्तो बभूव तत्रैव नृपेण ब्रह्मजन्मभिः ॥३०॥

---

श्रीकाशीराम भन्दछन्– हे ब्राह्मण ! "शिवको नगरी" भनिने काशी शिवको प्यारो छ,यसैले ब्रह्मा आदि देवताहरू कामविशेषले शिवलाई प्रसन्न पार्न त्यहाँ जान्छन् । शिवलिङ्गको स्थापना, कुवा, तलाउ आदिको निर्माण गर्नुपर्ने कुराको उल्लेख कविहरू गर्छन् । त्यसकारण वाराणसी आदिको महिमा धेरै ग्रन्थहरूमा बताइएको छ । त्यसरी नै कृष्णको मथुरा र ब्रह्माको प्रयाग प्यारो मानिएको छ । नित्य आनन्द र नित्य मुक्तस्वरूप दिने र सधैंका लागि सबै देवताहरूकी आमा र जन्मभूमि भने गण्डकी नदीको आफ्नै विशेष महिमा रहेको छ । मुक्तिको क्षेत्र मानिने यो गण्डकीगर्भभित्र शालग्रामको रूप लिई आएर बसेका देवताहरू सधैं मुक्त भएर नै बस्छन् ॥१०–१४॥

हे ब्राह्मण ! यसैले सबै देवताहरू गण्डकीका छोरी, नाती र पृथ्वीमा भए जति तीर्थ उनीहरूमा वासस्थान मानिएका छन् । हे ब्राह्मण ! गण्डकीको यो महिमाले गर्दा वेद र शास्त्र आदि सबै देवताहरूको नै माहात्म्य ठहर्छ । यसैले सबै तीर्थहरूमा सबै वेद र मन्त्रहरूद्वारा गण्डकीका शिला (शालग्राम)हरूको पूजा गर्नुपर्छ । लोक, वेद र पुराणहरूमा सधैं गण्डकीको व्यापक प्रसिद्धि छ । शालग्रमका प्रभावले गर्दा गण्डकी सधैं सबै ठाउँमा प्राप्त गर्न सकिने छिन् । अरू तीर्थहरू विघ्नराजको प्रभावअनुसार धर्म र अधर्मको अधीनमा रही क्रमैले केही प्रकाशित हुन्छन् भने केही लुप्त हुन्छन् ॥१५–१९॥

हे विद्वान् ! यसैले प्रलयकालमा लोकको हित गर्ने ती तीर्थहरूको ज्ञान गराउनको निमित्त यस गण्डकीमाहात्म्यनामक ग्रन्थको रचना गरिँदैछ । हे ब्राह्मण ! पृथ्वीपालन गर्ने सूर्य, विष्णु र विश्वको सृष्टि गर्ने ब्रह्माजीको महिमालाई कसैले लोप गर्न नसकेझैं गण्डकीको महिमालाई लोप गर्न कसले सक्छ? यी तीर्थहरूको माहात्म्य आफैं प्रसिद्ध छ, ग्रन्थविस्तारहरूको आवश्यकता छैन । ग्रन्थविस्तारपूर्वक अरू देवताहरूको माहात्म्य देखिएको छ । विद्वान्हरूले ग्रन्थविस्तारपूर्वक जसरी सबै तीर्थहरूको माहात्म्य रचना गरेका छन्, त्यसरी गण्डकीको महिमा विस्तार गरिएको पाईंदैन । प्रत्यक्ष आदि प्रमाणद्वारा गण्डकी लोकमा प्रसिद्ध छन् । गण्डकी, गोमती, गोदा, गङ्गा र गौतमी नामका यी पाँच नदीहरू भुक्ति र मुक्ति दुबै सिद्ध गर्नका लागि उत्तम नदी भनी प्रशंसा गरिन्छन् । यी पाँच नदीहरूको समीपमा पुगेपछि अरू तीर्थहरूको चिन्तन गर्नुपर्दैन ॥२०–२५॥

हे ब्राह्मण देवता ! मानिसले आफूले आर्जन गरेका धनले सकेजति यी नदीका तीर्थहरूमा नै देवकार्य र पितृकार्य गर्नुपर्दछ । एक समयमा प्रथम कल्पमा पुलह र पुलस्त्य नाम गरेका दुई महर्षिहरू ब्रह्माको आज्ञा शिरोपर गरी सृष्टिका लागि गण्डकीको तीरमा गए । त्यहाँ ती दुबैले आश्रम बनाएर ठूलो तप गरेका थिए । त्यो क्षेत्रका प्रभावले ती पुलह र पुलस्त्य दुबै सिद्ध बने । कुनै दिन मनुको वंशमा उत्पन्न भएका राजर्षि भरत पनि गण्डकीको तीरको आश्रय लिएर नारायण सम्फँदै राजाको जन्म, मृगको जन्म र ब्राह्मणका रूपमा जन्म लिएर ब्रह्मज्ञानी भई संसारसागरबाट मुक्त भए ॥२६–३०॥

अत्रैव सुतपस्तप्त्वा शालङ्कायनको मुनिः। रुद्रतुल्यं सुतं लब्ध्वा ययौ वै परमं पदम् ॥३१॥
तपस्तप्त्वाऽत्र सोमोऽपि परां कान्तिमवाप ह। रेवा तत्र तपस्तप्त्वा बभूव भुक्तिमुक्तिदा ॥३२॥
रावणोऽपि तपस्तप्त्वा बभूवात्र त्रिलोकजित्। तपस्तेपे महाविष्णुर्लोकानां हितकारकः ॥३३॥
सर्वे ब्रह्मादयो देवास्तपन्ति गण्डकीतटे। लभन्ते परमां सिद्धिं शालग्रामप्रभावतः ॥३४॥
भृगोस्तपोवनं ज्ञेयं गण्डक्योः सङ्गमे द्विज !। रामेणापि तपस्तप्तं सीतया चात्र वै पुनः ॥३५॥
प्रथमं मुक्तिक्षेत्रञ्च रुरुक्षेत्रं द्वितीयकम्। संयोगो गण्डकीनद्योस्तृतीयं परिकीर्तितम् ॥३६॥
चतुर्थं कथितं क्षेत्रं त्रिवेणीति द्विजोत्तम !। पञ्चमं हरिक्षेत्रञ्च देवानामपि दुर्लभम् ॥३७॥
पञ्चैतानि च क्षेत्राणि कविभिः कथितानि च। गोपितं क्षेत्रमेकञ्च तेषां षष्ठमनुत्तमम् ॥३८॥
क्षेत्रं रामपुरं नाम गण्डक्योर्गुप्तसङ्गमम्। भीमबन्धमिति ख्यातं क्षेत्रं शुक्लातटे स्थितम् ॥३९॥
भीमेश्वरो महादेवस्तत्र तिष्ठति नित्यशः। देवीस्थानमिति ख्यातं क्षेत्रं कृष्णातटे शुभम् ॥४०॥
देवी त्रिभुवनेशानी तत्र तिष्ठति सर्वदा। क्षेत्रे रामपुरे रामः सर्वथा वसति द्विज ! ॥४१॥
तद्दक्षिणे च शैलाग्रे सीताकुण्डं सुशोभनम्। तत्र सीता जगन्माता संस्थिता जनकात्मजा ॥४२॥
शिवरात्रिर्यदा विप्र ! श्रवणेन समन्विता। तदा भवति संयोगो गण्डक्योः शिवरामयोः ॥४३॥
भीमबन्धं दृढं बध्वा गृहीत्वा शुक्लगण्डकीम्। शूलेन भेदिताद्रन्धाच्छिवो मिलति कृष्णया ॥४४॥
तस्मिन् योगे नरो यो वै कुरुते भाग्यवान् किल। दैविकं पैतृकं कर्म लभते फलमक्षयम् ॥४५॥

इति श्रीकश्यपकुलतिलककाश्यपचरणोपासककश्यपगोत्रीयश्रीकाशीराम-विरचिते श्रीगण्डकीमाहात्म्ये प्रथमोऽध्यायः ॥१॥

---

यस गण्डकीतीर मा नै शालङ्कायन नाम गरेका ऋषिले उत्तम तप गरेर रुद्रसमान नन्दी नामक पुत्र जन्माएर परमपदमा प्राप्त भए। चन्द्रमाले पनि यहीँ गण्डकीतीरमा तपस्या गरेर नै सुन्दर कान्ति पाए। रेवा नामकी नदी पनि यहीँ तप गरेर भुक्ति र मुक्ति (दुबै) दिन समर्थ भइन्। रावण पनि यहीँ तपस्या गरेर त्रिलोकविजयी भए, लोकको हित गर्ने महाविष्णुले पनि यहीँ तप गर्नुभयो। ब्रह्मा आदि सबै देवताहरू गण्डकीको तीरमा तपस्या गरी शालग्रामको प्रभावले परम सिद्धि पाउँछन्। हे ब्राह्मण ! भृगुऋषिको आश्रम गण्डकीको सङ्गममा रहेको तथ्य जान्नुपर्छ। सीताका साथ रामले पनि यही गण्डकीको सङ्गममा तपस्या गर्नुभएको थियो ॥३१-३५॥

पाँचवटा क्षेत्रहरूमध्ये पहिलो मुक्तिक्षेत्र, दोस्रो रुरुक्षेत्र र तेस्रो गण्डकीहरूको सङ्गम हरिहरक्षेत्र मानिएको छ। हे ब्राह्मण ! त्रिवेणीलाई चौथो क्षेत्र मानिएको छ र पाँचौँ हरिक्षेत्र गण्डकी र गङ्गाको सङ्गम देवताहरूको पनि दुर्लभ तीर्थ मानिएको छ ॥३६-३७॥

यी पाँच क्षेत्रहरू कविहरूद्वारा वर्णन गरिएका छन्। यिनीहरूमा गण्डकीहरूको सङ्गममा लुकेर रहेको रामपुर नाम गरेको तीर्थलाई गोप्य राखिएको छ। यसैगरी सेतीगण्डकीको तीरमा रहेको भीमबन्ध अर्थात् भीमाद नाम गरेको तीर्थ पनि प्रसिद्ध छ। भीमादमा भीमेश्वर नाम गरेका महादेव सधैँ विराजमान हुनुहुन्छ। फेरि कालीगण्डकीको तीरमा देवीस्थान नाम गरेको क्षेत्र विख्यात छ ॥३८-४०॥

त्यस कालीगण्डकीको तीरमा तीनै लोकमा सामर्थ्य भएकी भगवती सधैँ नै बस्नुहुन्छ। हे ब्राह्मण ! पाल्पाको रामपुरक्षेत्रमा भगवान् राम सधैँ विराजमान हुनुहुन्छ। रामपुरक्षेत्रदेखि दक्षिणतर्फ पर्वतको टाकुरामा सुन्दर-सीताकुण्ड छ र त्यहाँ जगन्माता जनक राजाकी छोरी जानकी विराजमान हुनुहुन्छ ॥४१-४२॥

हे ब्राह्मण ! श्रवणनक्षत्रमा शिवरात्रि परेको समयमा सेती र कालीगण्डकीमा शिवजी र श्रीरामको मिलन हुन्छ। भगवान् शिव बलियो र डरलाग्दो बाँध बाँधेर सेतीगण्डकीलाई लिएर त्रिशूलले पारेका प्वालबाट कालीगण्डकीसँग भेट गर्नुपर्छ। शिव र कृष्णागण्डकीको त्यो भेट हुने शिवरात्रिमा जुन भाग्यशाली मानिसले देवकार्य र पितृकार्य गर्छ, त्यसले अक्षय फल पाउँछ ॥४३-४५॥

यसप्रकार कश्यपकुलका श्रेष्ठ काश्यपऋषिको चरणको उपासना गर्ने काश्यपगोत्रीय श्रीकाशीरामद्वारा रचित गण्डकीमाहात्म्यमा पहिलो अध्याय परिपूर्ण भयो ॥१॥

# द्वितीय अध्याय : मुक्तिक्षेत्रको वर्णन

भगवच्छर्मोवाच

ब्रह्मन् ब्रूहि वराहेण यदूक्तं धरणीं प्रति। माहात्म्यं गण्डकीनद्याः श्रोतृणां पापनाशकम् ॥१॥
मुक्तिक्षेत्रादिक्षेत्राणां षण्णां भक्तजनप्रियम्। यच्छ्रुत्वा मुच्यते जन्तुर्ब्रह्महत्यादिपातकैः ॥२॥

श्रीकाशीराम उवाच

शृणुष्वावहितो विप्र ! माहात्म्यं परमं शुभम्। गण्डक्याः श्रीवराहोक्तं धरण्या श्रुतमादरात् ॥३॥
चिन्तयित्वा त्रिलोकेशं गण्डकीं देवमातरम्। नत्वा गुरुपदौ सम्यक् प्रवक्ष्यामि यथामति ॥४॥
सच्चन्द्राञ्चितभालकुण्डललसद्गण्डस्थलोमाङ्कभृत् सद्धंसोत्पलशालिनी सुरसरिन्मौलिर्महेशोऽपि वै।
सद्वीपक्षितिदन्तकोटिकृतवान् विष्णुः सुरेशोऽपि यद्- गर्भे खर्वतनुं प्रकल्प्य विधृतः सा गण्डकी पातु नः ॥५॥
अष्टादशसहस्राणि कल्पानां कालधावतः। जग्मुरन्यस्य कल्पस्य वराहसंज्ञकस्य च ॥६॥
समारम्भे सुरश्रेष्ठो दध्यौ विष्णुं सनातनम्। बभूव ब्रह्मणो नस्तो वराहो यज्ञमूर्तिमान् ॥७॥
स्तुतो ब्रह्मादिभिर्देवैर्जगाम जलगर्भके। धरणीं दशने धृत्वा चोद्धर्तुमिच्छया प्रभुः ॥८॥

धरोवाच

भवान् को मां समुद्धर्ता समायातो हरीच्छया। स्थितां रसातलैकान्ते चौरवच्छूकराकृतिः ॥९॥

श्रीवराह उवाच

एक-द्वि-त्रि-चतुः-पञ्च-षट्-सप्ताष्ट-नवात्मकम्। निर्माता मानमर्यादारहितं बिद्धि मां धरे ! १०॥

धरोवाच

नमस्ते एकरूपाय ब्रह्मणे परमात्मने। द्वित्वरूपाय ते नौमि शिवशक्तिस्वरूपिणे ॥११॥
नमस्ते त्रित्वरूपाय हरये त्रिगुणात्मने। नमो वेदादिरूपाय चतुर्द्धा रूपधारिणे ॥१२॥
नमो भूतादिरूपाय पञ्चधा धर्मधारिणे। नमो भावादिरूपाय षड्विधाय महात्मने ॥१३॥
वासरादिस्वरूपाय नमस्ते सप्तमूर्तये। नमोऽनन्तादिरूपाय महते चाष्टमूर्तये ॥१४॥

---

भगवत् शर्माले भन्दछन् – हे ब्राह्मणदेव ! श्रोताहरूको पापनाश गर्ने गण्डकी नदीको जुन माहात्म्य वराहले पृथ्वीलाई भन्नुभयो, त्यो मलाई सुनाउनुहोस्। मुक्तिक्षेत्र आदि ६ क्षेत्रहरूको भक्तप्रिय महिमा सुनेर प्राणी ब्रह्महत्या आदि पापहरूबाट मुक्त हुन्छ ॥१-२॥

श्रीकाशीरामले भने- हे ब्राह्मण ! वराहद्वारा उपदेश गरिएको र श्रद्धापूर्वक पृथ्वीद्वारा सुनिएको गण्डकीको पवित्र र उत्तम माहात्म्य सावधान भएर श्रवण गर्नुहोस्। तीन लोकका अधिपति भगवान् विष्णु र देवताहरूकी आमा गण्डकीलाई सम्झेर र गुरुका दुबै पाउमा प्रणाम गरी आफ्नो बुद्धिअनुसार म राम्ररी गण्डकीको महिमा बताउँछु। जुन गण्डकीले निधारमा सुन्दर चन्द्रलाई धारण गरी चन्द्रमौलिका रूपमा प्रसिद्ध हुनुभएका, गालामा कुण्डल धारण गर्नुहुने गौरीलाई काखमा लिनुहुने र हाँस, कमलहरूले सुन्दर भागीरथीलाई शिरमा धारण गर्नुहुने शङ्कर र द्वीपहरूसँगै वराह बनेर पृथिवीलाई दाँतको टुप्पोमा राख्ने विष्णुलाई पनि बच्चाका रूपमा धारण गरिन्, ती गण्डकीले हाम्रो सुरक्षा गरून्। कालको महाप्रवाहमा १८ हजार कल्प बितेर अर्को वराह नामको कल्पको आरम्भ हुँदा देवताहरूमा श्रेष्ठब्रह्माजीले अविनाशी विष्णुको ध्यान गर्नुभयो र ब्रह्माको नाकबाट यज्ञस्वरूप भगवान् वराहको आविर्भाव भयो। ब्रह्मा आदि देवताहरूद्वारा स्तुति गरिएका भगवान् वराह पातालमा डुबेकी पृथिवीलाई उद्धार गरी गरी बाहिर ल्याउने मनसायले समुद्रको अगाध जलभित्र प्रवेश गर्नुभयो ॥३-८॥

पृथ्वीले भनिन् – विष्णुका इच्छाले पातालको एकान्तमा रहेको म पृथिवीलाई उठाउन खोज्दै आएको चोर जस्तो बँदेलको आकार भएको तपाईं को हुनुहुन्छ ? ॥९॥

श्रीवराहले भन्नुभयो – हे पृथ्वी ! तिमी मलाई १ देखि ९ सम्मका स्वरूप भएको र मान-मर्यादा विना अनेकौं ब्रह्माण्डहरूको निर्माण गर्ने पुरुष सम्झ ॥१०॥

पृथ्वीले भनिन् – एउटा मात्र स्वरूप हुने तपाईं परब्रह्म, परमात्मालाई नमस्कार छ। शिव र शक्तिका रूपमा दुईप्रकारको स्वरूप धारणा गर्ने तपाईंलाई नमस्कार गर्दछु। सत्त्व, रज र तम नामका तीन गुणहरूका रूपमा तीनरूप धारण गर्ने तपाईं विष्णुलाई नमस्कार छ। ऋक, यजु, साम, अथर्व नामका ४ वेदहरूका चार स्वरूपधारण गर्ने तपाईंलाई नमस्कार गर्दछु। पृथ्वी, जल, तेज, वायु, र आकाशका रूपमा ५ प्रकारको स्वभाव -धारण गर्ने हजुरलाई नमस्कार गर्दछु। जन्मनु, जिउनु, बदलिनु, घट्नु र नाश हुनु जस्ता छ प्रकारका भाव अनुसारका स्वरूप धारण गर्ने महात्मालाई नमस्कार गर्दछु। आइत, सोम आदि वारहरूको सात रूप धारण गर्ने तपाईंलाई नमस्कार गर्दछु। अनन्त आदि नागहरूका आठ स्वरूप धारण गर्ने महान् स्वरूप भएका हजुरलाई नमस्कार गर्दछु ॥११-१४॥

नमस्ते नवरूपाय ग्रहादिरूपधारिणे। नमस्ते स्तुतिरूपाय स्तोत्रे स्तवनकर्मणे ॥१५॥
महिमानं न जानन्ति ब्रह्मरुद्रादयोऽपि ते। कथं जानाम्यहं देव ! भूतधर्मवशङ्गता ॥१६॥

वराह उवाच

वरं ब्रूहि धरे ! दद्मि यत्ते मनसि वर्तते। मूर्तीनां प्रथमा मूर्तिर्मम त्वं लोकधारिणे ॥१७॥
अष्टकेन पदार्थेन त्वयोक्तेन वसुन्धरे। सन्तुष्टोऽस्मि समारम्भे मम कल्पस्य शोभने ! ॥१८॥

धरोवाच

उपपन्नमिदं सर्वं दर्शनात् तव माधव !। ब्रुवन्ति कवयो देव ! वरं त्वद्दर्शनावधिम् ॥१९॥
तथापि चोपदेशं मे वरं जनार्दन !। क्षेत्रशैलनदीनाञ्च सद्भिः सेव्यं तव प्रियम् ॥२०॥
तद्वदस्व प्रसादेन येन यान्ति परं पदम्। मुक्तिदं भुक्तिदञ्चैव पित्र्यादीनाञ्च तारणम्... ॥२१॥

वराह उवाच

क्षेत्राणां मुक्तिक्षेत्रञ्च श्रेष्ठं गिरिषु शैलराट्। नदीषु गण्डकी श्रेष्ठा त्रयो मे परमप्रियाः ॥२२॥

धरोवाच

भूलोकं वस्तुतः सर्वं समानं भगवन् ! किल। उत्तमं मध्यमं हीनं कथं जाने तदुच्यताम् ॥२३॥

श्रीवराह उवाच

शृणु देवीति भद्रं ते यद् गुह्यं परिपृच्छसि। अत्र ते वर्णयिष्यामि सेतिहासं कथानकम् ॥२४॥
षट्त्रिंशकसहस्राणां कल्पानामादिमे धरे। पुरा विष्णुस्तपस्तेपे लोकानां हितकाम्यया ॥२५॥
हिमालयगिरौ रम्ये देवतागणसेविते। ततो बहुतिथौ काले गते सति तपस्यतः ॥२६॥
तीव्रं तेजः प्रादुरासीद् येन तप्ताश्चराचराः। तस्योष्मणा समुद्भूतः स्वेदः परस्य गण्डयोः ॥२७॥

---

ग्रहहरूका रूपमा नौ स्वरूप धारण गर्ने तपाईंलाई नमस्कार गर्दछु। स्तुति, स्तुति गर्ने मानिस र स्तुति कर्मको स्वरूप धारण गर्ने तपाईंलाई नमस्कार गर्दछु। ब्रह्मा, शङ्कर आदि देवताहरू पनि तपाईंको महिमा बुझ्दैनन् भने ५महाभूतहरूमध्ये पृथ्वीको स्वरूप धारण गरेकी म हजुरको महिमा कसरी जान्न सक्छु ? ॥१५-१६॥

श्रीवराहले भन्नुभयो – हे पृथ्वी ! म तिमीलाई तिम्रो मनमा लागेको वर दिन्छु, भन। हे लोकधारण गर्ने पृथ्वी ! तिमी मेरा सम्पूर्ण रूपहरूमा प्रथम स्वरूप हौ। हे सुन्दरपृथ्वी ! मेरो (वराहनामको) कल्पको शुरुमा तिमीले वर्णन गरेका आठपदार्थ ८ मूर्तिहरूको स्थान लिने पूर्वोक्त १ देखि ८ सम्मका पदार्थद्वारा म सन्तुष्ट छु ॥१७-१८॥

पृथ्वीले भनिन् – हे विष्णु ! तपाईंको दर्शनद्वारा नै मलाई तपाईंको प्रश्नअनुसारको यी सबै उत्तर प्राप्त भए। हे भगवन् ! कविहरू "वरदानको सीमा दर्शनसम्म हुन्छ" भन्छन् तर पनि हे जनार्दन ! सज्जनहरूले सेवा गर्न लायक तपाईंका प्यारा स्थानविशेष, पर्वत र नदीहरूको वर्णनरूपी वर दिनुहोस्। जसद्वारा मानिसहरू उत्तमपद प्राप्त गर्छन्। भोग र मोक्ष दुबै दिने र पितृहरू तार्ने ती तपाईंका प्यारा क्षेत्रबारे मलाई बताउनुहोस् ॥१९-२१॥

श्रीवराहले भन्नुभयो – सबै तीर्थहरूमा मुक्तिक्षेत्र श्रेष्ठ छ, पर्वतहरूमा हिमालय प्रिय छन् र नदीहरूमा गण्डकी श्रेष्ठ छन्, यी तीनवटा मेरा अतिप्यारा विषय हुन् ॥२२॥

पृथ्वीले भनिन् – भगवन् ! विचार गर्दा सारा पृथ्वीमण्डल समानै देखिन्छ, फेरि त्यहाँका विषयलाई उत्तम, मध्यम र अधम (पृथ्वी) कसरी जानूँ ? त्यो भन्नुहोस् ॥२३॥

श्रीवराहले भन्नुभयो – हे पृथ्वी ! तिमी देवी हौ, तिम्रो कल्याण होस्, जो गोप्य कुरा सोधिरहेकी छ्यौ, त्यसको उत्तर म बताउँछु, तिमी सुन, यी क्षेत्रहरूका विषयमा तिमीलाई इतिहाससँगै कथा पनि बताउँछु। हे पृथ्वी ! ३६ हजार कल्पहरूमा पहिलो कल्पमा पहिले भगवान् विष्णुले लोकको हितको इच्छा गरेर धुप्रै देवताहरूले सेवा गरिएको र सुन्दर हिमालयपर्वतमा तप गर्नुभयो। तप गर्ने विष्णुको धेरै समय बितेपछि एउटा असह्य तेज प्रकट भयो र यस तेजद्वारा चर र अचर प्राणीहरू जल्न थाले। त्यस तेजको तातोले भगवान् विष्णुका दुबै गालाहरूमा पसिना पैदा भयो ॥२४-२७॥

तेज जाता धुनी दिव्या लोकानामघहारिणी । महर्लोकादपश्यन्तो विस्मिताः सर्वतोदिशम् ॥२८॥
तस्याः प्रभवमिच्छन्तो ज्ञातुं नेशाः कथञ्चन । देवाः सर्वे ततो जग्मुर्ब्रह्माणं प्रति चोत्सुकाः ॥२९॥
पप्रच्छुः प्रभवं तस्याः प्रणम्य चतुराननम् । ब्रह्मापि हि न जानाति मोहितस्तस्य मायया ॥३०॥
ततो देवैः समं ब्रह्मा शङ्करं प्रत्युपस्थितः । तं दृष्ट्वा सहसा देवैः समेतं प्रत्युपस्थितम् ॥३१॥
पप्रच्छ तं महादेवस्तदागमनकारणम् । ब्रह्मा च तं महादेवं पप्रच्छ प्रणतः स्थितः ॥३२॥

ब्रह्मोवाच

अत्यद्भुतं महत्तेजः कुतो जातं महेश्वर ! वयं प्रत्याहतदृशो जगद्व्यतिकरंमहत् ॥३३॥
किन्नु स्यात् कथमेतत् कश्चास्मिन् भविता विभो ! शिवः क्षणं ततो ध्यात्वा ब्रह्माद्यान् प्रत्युवाच ह ॥३४॥

श्रीशिव उवाच

महसोऽस्य समुत्पत्तिर्यतो वै दर्शयामि वः । एक-द्वि-त्रि-चतुः पञ्चा यतस्तस्मादिदं महः ॥३५॥
यस्य स्मरणमात्रेण वयं स्याम स्वकर्मसु । समर्थाः सोऽद्य यत्रास्ते यत्र यान्तु सुरोत्तमाः ॥३६॥
एतच्छम्भुवचः श्रुत्वा सर्वे ब्रह्मादयः सुराः । हर्षिता रुद्रसूक्तेन शिवं सम्पूज्य भक्तितः ॥३७॥
समूचुर्नय नः शम्भो ! यत्रास्ते जगदीश्वरः । त्वमस्माकं गुरुः सेव्यो वरदः कुलदेवता ॥३८॥
देवैः सम्प्रार्थितश्चेत्थं शम्भुर्देवगणैः सह । जगाम हिमाशैलाग्रे शुभे नारायणाश्रमे ॥३९॥
द्राक्षाऽक्षोटकदाडिमचन्दनद्रुममण्डिते । जातिचम्पकपद्मादिनानाकुसुमशोभिते ॥४०॥
रम्भारसालपनसनारङ्गादिफलान्विते । नानामृगगणाकीर्णे नानापक्षिविराजिते ॥४१॥
मनः शिलादिपाषाणैः सुवर्णादिकधातुभिः । हिमडिण्डीरशुभ्रोच्चध्वजादिपरिशोभते ॥४२॥

---

त्यही पसिनाबाट संसारको पापनाश गर्ने पवित्रगङ्गा उत्पन्न भइन् । महर्लोकबाट चारैतिर केही नदेख्ने देवताहरू सबै आश्चर्यचकित भए । कसैगरी ती गण्डकीको उत्पत्ति जान्न नसकेका सबै देवताहरूउत्कण्ठित भएर ब्रह्माजीको समीपमा गए । उनीहरूले ब्रह्माजीलाई प्रणाम गरेर गण्डकीको प्रादुर्भावको विषयमा प्रश्न गरे तर विष्णुको मायाले मोहित भएका ब्रह्माजीले पनि गण्डकीको आविर्भावको विषयमा केही जान्न सक्नुभएन । त्यसपछि देवताहरू सँगै ब्रह्माजी शङ्करको अगाडि उपस्थित हुनुभयो । देवताहरूले सेवा गरिएका ब्रह्माजीलाई अगाडि उपस्थित देखेर तुरुन्त भगवान् शङ्करले ब्रह्माजी आउनाको कारण सोध्नुभयो । ब्रह्माजीले पनि नम्र भई बसेर महादेवसँग प्रश्न गर्नुभयो ॥२८-३२॥

ब्रह्माले भन्नुभयो – हे महादेव ! अत्यन्त विस्मयप्रद महान् तेज कहाँबाट उत्पन्न भयो ? यस तेजद्वारा हामी आँखा बन्द भएका छौँ । हे भगवन् ! जगत्मा उत्पात मच्चाउने यो ठूलो के होला ? कसरी उत्पन्न भएको होला र यसमा को होला ? त्यसपछि शङ्करले केही समय ध्यान गरेर ब्रह्मा आदि देवताहरूलाई भन्नुभयो ॥३३-३४॥

श्रीशिवले भन्नुहुन्छ – जस-जसबाट यो तेजको उत्पत्ति भयो, म त्यो पदार्थ तपाईंलाई देखाउँछु जसबाट एक, दुई, तीन, चार र पाँच देवता वा संख्याको उत्पत्ति हुन्छ, त्यसबाट नै यो तेज उत्पन्न भएको छ । हे देवताहरू हो ! जसको सम्फनमात्रले पनि हामीसबै देवताआ-आफ्नो कर्ममा सफल हुन्छौँ, ती जगदीश्वर जहाँ हुनुहुन्छ, त्यहाँ जानुहोस् । शङ्करको वचन सुनेर सबै ब्रह्मा आदि देवताहरूले शङ्करलाई रुद्राष्ट्यध्यायका मन्त्रहरूले भक्तिसाथ पूजा गरी प्रसन्न भएर भने – हे शङ्कर ! जहाँ जगदीश्वर हुनुहुन्छ, त्यहाँ हामीहरूलाई लैजानुहोस्, किनकि तपाईं हामीहरूका गुरु, स्वामी, वरदाता र कुलदेवता पनि हुनुहुन्छ ॥३५-३८॥

यसप्रकार देवताहरूद्वारा प्रार्थना गरिएका शङ्कर सबै देवताहरूलाई साथ लिएर हिमालयपर्वतको टाकुरामा रहेको, दाख, ओखर, दारिम, र श्रीखण्डका रुखहरूले सिंगारिएको, जाई, चाँपो, कमल आदि अनेकौँ फूलहरूले सुहाएको, केरा, आँप, कटहर, सुन्तला, आदि फलहरूले भरिएको, अनेकौँ मृगहरूका वथानले व्याप्त भएको, अनेकौँ चराहरूले सुन्दर भएको, मैनशिल आदि ढुङ्गाहरूले, सुन आदि धातुहरूले र हिउँका गाज जस्तै सेता एवं अग्ला ध्वजाहरूले चारैतिर सुहाएको पवित्र नारायण आश्रममा जानुभयो ॥३९-४२॥

तत्रस्थं कमलाकान्तं श्यामलाङ्गं चतुर्भुजम्। शङ्खचक्रगदापद्मकरपङ्कजधारिणम् ॥४३॥
पीताम्बरधरं पद्ममालिनं मणिमालिनम्। वैजयन्त्या भ्राजमानं किरीटकुण्डलान्वितम् ॥४४॥
केयूरमुद्रिकाकाञ्चीनूपुरोत्तमभूषितम्। सर्वमङ्गलद्रव्याङ्गं सर्वलक्षणसंयुतम् ॥४५॥
सर्वशक्तिसमायुक्तं गणैः सर्वैः सुसेवितम्। ददर्श पुण्डरीकाक्षं शिवो देवगणैः सह ॥४६॥

श्रीशिव उवाच

जय खड्गखगेशखगादितनो ! खगलोचन ! खेचरमण्डलभृत्।
खगराजसरूपखलेशरिपो ! कमलासनकासनलासन भो ! ॥४७॥
लयलीन ! मनोरथरञ्जनकृत् कृतविश्वविधारणविग्रहसृक्।
धृतशक्र ! द्विजावन ! कोटितनो ! तनुतारणतारकतारमनो ! ॥४८॥
मनुमानसदेहजधर्मवपु ! वपुषाल्पितसर्वखगोल ! विभो !
गुणहीन ! गुणालय ! गुप्तमनो ! गुणरूपसरूप ! गणेश ! गुरो ! ॥४९॥
गिरिशीर्षश्रिताश्रमवर्णयुत ! भवनाथ ! समर्थ ! दशाकृतिभाक्।
भुजगेश ! खगेश ! भगेश ! हरे ! हरिनायकपावन ! रावणछिद् ॥५०॥
क्षितिभारनिहारदिवाकररुक् ! रुचिरार्थद ! शर्वद ! भर्गनिधे !
निधिसिद्धिसबुद्धिविवर्धनविद ! विदितार्थ ! परार्थधरार्थतनो। ॥५१॥

---

तनुमानसमानस्वरूपमते ! मतिमानसकादिहृषीकपते !
पतितार्थविभावनधर्मसुहृत् ! हरहारविहारविवर्तनकृत् ॥५२॥

त्यस नारायण आश्रममा रहेका लक्ष्मीका स्वामी, शरीरको नीलो वर्णले सुहाएका, कमल जस्ता ४ हातहरूमा शङ्ख, चक्र, गदा र कमल धारण गर्नुहुने, पँहेला कपडा, कमल र मणिको मालाधारण गरेका, वैजयन्ती–मालाले सुहाएका, शिरमा मुकुट र कानमा कुण्डल, धारण गरेका, असल वाजु, औंठी, करधनी र पाउजेवले सुहाएका, अङ्गहरूमा सबै मङ्गलवस्तुहरूको चिह्न भएका, सबै लक्षणले युक्त, सबै शक्तिहरूले भरिभराउ, र सबै देवताहरूले सेवा गरिएका भगवान् विष्णुलाई सबै देवताहरूका साथ भगवान् शङ्करले दर्शन गर्नुभयो ॥४३–४६॥

श्रीशिवले भन्नुभयो – खड्ग, गरुड र अरू सामान्यपक्षीहरूको स्वरूप भएका, खञ्जननामक चराका जस्ता सुन्दर आँखा भएका वा सूर्य र चन्द्र नै आँखा भएका, आकाशमा घुम्ने विद्याधर, ग्रहनक्षत्र आदिहरूको समूह धारण गर्ने, देवताहरूका राजा इन्द्र जस्ता वा गरुड जस्तै वेग भएका, दैत्यहरूका राजा हिरण्यकशिपु आदिका शत्रु भएका, ब्रह्मालाई प्रकाशन गर्नेर खेलाउने हे विष्णु ! हजुरको जय होस्। प्रलयमा लीन भएर बस्ने, मनका इच्छाहरू पूर्ण गर्ने, आफूले बनाएका संसारको धारण गर्ने, (अनेक) अवतार–शरीरधारण गर्ने, इन्द्र र ब्रह्मणहरूको रक्षा गर्ने, अनन्त शरीरधारण गर्ने र प्राणीहरूलाई तार्ने स्पष्ट तारकमन्त्रको स्वरूप बनेका हे विष्णु ! तपाईंको जय होस्। मनु, कुमार, दक्ष र धर्मराज आदिको स्वरूप भएका, वामन अवतारमा आफ्नो विशाल शरीरद्वारा आकाशमण्डल नै ढाक्ने, चारैतिर व्यापक, सत्त्व आदि तीन गुणभन्दा पर भएर पनि उनीहरूका आधार, गोप्यमन्त्रको स्वरूप लिने, सत्त्व आदि गुणहरू समान गणका स्वामी र संसारका गुरु हे विष्णु ! तपाईंको जय होस् ॥४७–४९॥

उच्च हिमालय पर्वतमा आश्रय लिने, वर्णाश्रम धर्मको रचना गर्ने, संसारका स्वामी, शक्तिसम्पन्न, दश अवतार धारण गर्ने, शेषनाग, गरुड, र ऐश्वर्यका अधिपति, सुग्रीवलाई पवित्र पार्ने वा वानरहरूका हितैषी र रावणलाई मार्ने हे विष्णु ! तपाईंको जय होस् । पृथिवीको भाररूपी तुषारो हट्उने सूर्यको जस्तो कान्ति भएका, सुन्दरसिद्धि र कल्याण दिने, तेजका खानी भएका, सिद्धि र बुद्धिका खानी र उनीहरूलाई बढाउन सिपालु भएका, रहस्य जान्ने र अरूका लागि र पृथिवीका लागि स्वरूपधारण गर्ने विष्णु ! तपाईंको जय होस्। शरीरको नापअनुसार स्वरूप र बुद्धिले सम्पन्न, बुद्धि, मन, ब्रह्मा आदि देवताहरू र इन्द्रियहरूका स्वामी, पतित विचारहरूलाई पवित्र पार्ने र धर्मका मित्र र शेषको शरीरमा आनन्दका साथ कुक्षिपरिवर्तन गर्ने हे विष्णु ! तपाईंको जय होस् ॥५०–५२॥

कृतविश्वविचित्रविधानविधे । विधिवेदधरामरधर्ममिते ।
मतिमानदमानद । देवगते । गतिगूढ । गतागत । गुप्ततनो । ॥५३॥
तनुतारसमुद्धतभक्त । नमो नमतां भयनाशन । देव । नमः।
नमनाग्रपराक्रममेव विभो । मम जानिहि सर्वजनस्थविधो । ॥५४॥

श्रीवराह उवाच

शिवेनेत्थं स्तुतो विष्णुरुन्मील्य नयने धरे । ददर्शाग्रे शिवं शर्वं देववृन्दसमन्वितम् ॥५५॥
कृपयोवाच भो शम्भो । स्वयम्भुभुवनेश्वराः । किमार्थमागता यूयमत्र लोकाधिकारिणः ॥५६॥
ब्रूत मत्तो वरान् सर्वे प्रसन्नोऽस्मि मनोगतान् । स्तुत्याऽनया विशेषेण ददाम्यद्य यथार्थया ॥५७॥

श्रीशिव उवाच

प्राप्त एष वरो देव । परमस्माभिरादिमः । यद् दत्तं दर्शनं तद् वै दुरापं क्रतुकोटिभिः ॥५८॥
तथापि त्वन्मुखाम्भोजसम्भूता भारती विभो ।। परमेणादरेणैव ग्राह्या च गुरुगौरवात् ॥५९॥
वरान् ब्रूमो वरदराद् । त्वत्तो मुक्तिपतेः परान् । मुक्तिक्षेत्रमिदं क्षेत्रं दर्शनादेव मुक्तिदम् ॥६०॥
गण्डस्वेदोद्भवा ह्यत्र गण्डकी सरितां वरा । नगो हिमालयो नाम तव रूपं न संशयः ॥६१॥
अत्रैव दर्शनं प्राप्तमस्माभिः प्रथमं शुभम् । अत्र स्थेयं त्वया देव । लोकानां हितकाम्यया ॥६२॥
त्वयि स्थिते जगन्नाथे तव सान्निध्यकारणात् । अहं ब्रह्मा च देवाश्च मुनिभिः सह केशव । ॥६३॥
सर्वे वेदाश्च तीर्थानि सकलानि च । वसिष्यामः सदैवात्र गण्डक्यां जगतांपते । ॥६४॥
क्षेत्राणां परमं क्षेत्रं त्रिषु लोकेषु चोत्तमम् । भुक्तिदं मुक्तिदञ्चैव पितृणां स्वर्गदं परम् ॥६५॥
भवत्वेवं वरस्त्वत्तः प्रार्थितः परमो मया । तिष्ठामि मुक्तिक्षेत्रेऽस्मिन् तव सान्निध्यकारणात् ॥६६॥

---

नानाप्रकारको कार्यरूपजगत्का निर्माता, ब्रह्मा, वेद र ब्राह्मणहरूका धर्मका प्रमाण, बुद्धि र मान दिनेहरूलाई पनि मान दिने, देवताहरूका गति, गोप्य गति भएका, भक्तहरूका लागि प्राप्त र अरूका लागि अप्राप्त हुने र अदृश्यस्वरूप भएका हे विष्णु । तपाईंको जय होस् । भक्तहरूको शरीरको रक्षा र उद्धार गर्ने तपाईं विष्णुलाई नमस्कार छ । शरणागतहरूको डर हटाउने तपाईं विष्णुलाई नमस्कार छ । सबै प्राणीहरूमा व्यापक भएर रहने चन्द्रमा जस्ता हे विष्णु । हजुरलाई प्रणाम गर्नु नै मेरो पराक्रम हो, मसँग अरू केही छैन । हे प्रभु ।म हजुरलाई प्रणाम गर्दछु ॥५३–५४॥

श्रीवराहले भन्नुभयो – हे पृथिवी । शिवद्वारा यस प्रकार स्तुति गरिनुभएका विष्णुले आँखा खोलेर सबै देवताहरूसहित आउनुभएका मङ्गलरूप शिवलाई आफ्नो सामु देख्नुभयो ॥५५॥

नारायणले कृपापूर्वक भन्नुभयो – हे शङ्कर । हे ब्रह्मा आदि लोकपालहरू । आ–आफ्नो लोकशासन गर्ने तपाईंहरू के कामले यहाँ आउनुभयो? विषेशरूपमा आज यो तपाईंहरूको वास्तविक स्तुतिद्वारा म प्रसन्न छु, यसैले तपाईंहरू सबै आफ्ना मनले चिताएका वरहरू मबाट माग्नुहोस् ॥५६–५७॥

श्रीशिवले भन्नुभयो – भगवन् । जो करोडौं यज्ञहरूद्वारा पनि पाउन कठिन दर्शन हजुरले दिनुभयो, यो नै हामीले पहिलो उत्तम वर प्राप्त गरेका छौं । हे परमात्मा । हजुर हामीहरूको गुरु हुनुभएकाले तपाईंको कमलको फूलजस्तो सुन्दर मुखबाट निस्केको वचन ठूलो आदरले नै ग्रहण गर्न योग्य छ । हे वरदाताहरूमा श्रेष्ठ । मुक्तिका अधिपति तपाईंबाट हामीहरू उत्तम वरको याचना गर्दछौं । मुक्तिक्षेत्र नाम गरेको यो क्षेत्र दर्शनले मात्र नै मुक्ति दिने बनोस् । तपाईंको गालाको पसिनाबाट यहाँ उत्पन्न भएकी कालीगण्डकी नदीहरूमा उत्तम होऊन् र प्रसिद्ध हिमालयपर्वत पनि तपाईंको रूप हो भन्ने कुरामा शङ्का नहोस् ॥५८–६१॥

हे जगत्पति । हामीहरूले यस ठाउँमा नै पहिलो पवित्र दर्शन पाएका छौं, यसैले लोकको हित गर्ने इच्छाले हजुर यहाँ नै रहनुपर्छ । जगत्का स्वामी तपाईं यस गण्डकीमा रहेमा तपाईंको सामीप्यको कारणले म, ब्रह्मा, देवता, ऋषि, वेद, यज्ञ, र सम्पूर्ण तीर्थहरू सधैं यस मुक्तिक्षेत्रमा वास गर्नेछौं । यो मुक्तिक्षेत्र तीन लोकका क्षेत्रहरूमा भुक्ति, मुक्ति दिने र पितृहरूका लागि उत्तम स्वर्ग दिने ज्यादै उत्तम क्षेत्र होस् । यसप्रकार तपाईंबाट मैले उत्तम वर याचना गरेको छु । यसपछि तपाईंको नजिकमा बस्न पाउने कारणले म यसै मुक्तिक्षेत्रमा रहनेछु ॥६३–६६॥

ब्रह्मोवाच

नमः सर्वकलातीत ! नमः सर्वकलालय ! । आकाशदिग्जलादित्यं भर्गं त्वामेव धीमहि ॥६७॥
वरमेतत् पुरा प्राप्तं त्वत्तो हि वरदर्षभात् । तथापि लोकधर्मार्थं वरमेकं वदाम्यहम् ॥६८॥
तिष्ठामि मुक्तिक्षेत्रेऽस्मिन् समीपे तव केशव । दिव्यवैश्वानरो भूत्वा ममाग्रे तिष्ठ सर्वदा ॥६९॥
जुहोमि सर्वदेवेभ्यस्तृप्तास्तिष्ठन्तु नित्यशः । हव्यकव्यभुजोऽन्येऽपि तृप्यन्त्वत्र स्वभावतः ॥७०॥

देवा ऊचुः

नमोऽव्यक्तस्वरूपाय नमस्तेऽव्यक्तकर्मणे । नमस्ते कालरूपाय भूतकर्त्रे नमो नमः ॥७१॥
नमो मत्स्यादिरूपाय सांख्याचार्याय ते नमः । योगाचार्याय देवाय वर्णधर्मप्रकाशिने ॥७२॥
नमो वेदप्रकाशाय पुराणाचार्यकाय ते । सर्वावासाय सर्वेषु निविष्टाय नमो नमः ॥७३॥
सहस्त्रावयवेशाय नमस्ते शेषशायिने । ब्रह्मेशविष्णुरूपाय नमस्ते खगरूपिणे ॥७४॥
देवर्षिवेदविप्राणां रक्षणाय नमो नमः । यज्ञमन्त्रतपोमन्त्रस्वरूपाय नमो नमः ॥७५॥
वरं ब्रूतेति यत्प्रोक्तं भवता भूवभावन ! । तद् ब्रूमो हि वरान् त्वत्तो वयं सर्वे हृदि स्थितान् ॥७६॥
तिष्ठामो मुक्तिक्षेत्रेऽस्मिन् त्वया सह सदा विभो ! । त्वद्गण्डस्थलसम्भूता यत्र दिव्या सरिद्वरा ॥७७॥
यत्र यूयं त्रयो देवा ब्रह्मविष्णुमहेश्वराः । तव मूर्तिरसौ शैलो यत्र दिव्यो विभावसुः ॥७८॥
निवासं देहि देवेश ! कृपया नोऽत्र वै शुभम् । नगेऽस्मिन् यो वसेद् भक्त्या मुक्तो भवतु बन्धनात् ॥७९॥
गण्डक्यां यो नरः स्नायात् प्राप्नोतु परमं पदम् । अस्मिन् यो जुहुयादग्नौ मुक्तो भवतु बन्धनात् ॥८०॥
स्थित्वाऽत्र यो भजेत्त्वां वै दिनमेकं तु भाग्यवान् । प्राप्नोतु परमं स्थानं देवानामपि दुर्लभम् ॥८१॥
तत्र यो भाग्यवान् दद्याद् भूमिगोहेमरौप्यकम् । पात्रवस्त्राणि रत्नानि सर्वं भवतु चाक्षयम् ॥८२॥
मुक्तिक्षेत्रकृतेनैव श्राद्धेन पितरो हरे ! स्वर्गस्था नरकस्था वा यान्तु ते परमां गतिम् ॥८३॥

---

ब्रह्माजीले भन्नुभयो – सबै कलाहरूभन्दा पर रहेका हे भगवन् ! हजुरलाई नमस्कार छ, र सबै कथाहरू र कलाहरूले परिपूर्णहरिलाई नमस्कार छ । आकाश, दिशा, जल, सूर्य र तेजोमय हे भगवन् ! हामी हजुरको ध्यान गर्दछौं । हे विष्णु ! वरदाताहरूमा उत्तम पुरुष हजुरबाट मैले हजुरसँगै रहने वर पहिले प्राप्त गरेको छु तापनि लोकधर्मका लागि अर्को एउटा वर याचना गर्दछु। हे केशव ! यस मुक्तिनाथ तीर्थमा हजुरको समीपमा अलौकिक अग्निज्वाला बनेर बस्न चाहन्छु। हजुर सधैं मेरो समीपमा विराजमान हुनुहोस्। म सबै देवताहरूको तृप्तिका लागि हवन गर्छु र उनीहरू सधैं तृप्त रहून्। अरू पनि हवन गरिएको पदार्थ र तर्पण गरिएको पदार्थ जल भोग गर्ने देवता र पितृहरू यहाँ स्वभावैले तृप्त रहून् ॥६७-७०॥

देवताहरूले भने – आफ्नो स्वरूपगुप्त राख्नुहुने हजुरलाई नमस्कार छ। कर्म गुप्त राख्नुहुने तपाईंलाई नमस्कार छ। कालको रूप लिने तपाईंलाई नमस्कार छ र प्राणीहरूको सृष्टि गर्ने तपाईंलाई बारम्बार नमस्कार। माछाको पहिलो अवतार लिने तपाईंलाई नमस्कार छ, सांख्यशास्त्रका आचार्य कपिलको रूप लिने तपाईंलाई नमस्कार छ, योगशास्त्रका आचार्य पतञ्जलिको रूप लिने र चार वर्णहरूको धर्म प्रकाशनमा ल्याउने तपाईंलाई नमस्कार छ। वेदहरूलाई प्रकट गर्ने र पुराणहरूका आचार्य व्यासको रूप लिने तपाईंलाई नमस्कार छ, सबैका वासस्थान भएका र सबैमा प्रवेश गरेका तपाईंलाई बारम्बार नमस्कार छ ॥७१-७३॥

हजारौं अङ्गहरूका स्वामी र शेषनागमा शयन गर्नेतपाईंलाई नमस्कार छ। ब्रह्मा, शिव र विष्णुको रूप लिने र गरुड को रूप लिने तपाईंलाई नमस्कार छ। देवता, ऋषि, वेद, र ब्राह्मणको रक्षा गर्ने तपाईंलाई बारम्बार नमस्कार छ। यज्ञ, व्रत, तपस्या र मन्त्रको स्वरूप लिने तपाईंलाई बारम्बार नमस्कार छ। हे प्राणीहरूका पालक विष्णु ! तपाईंले 'वर माग्नोस्' भनेर भन्नुभएकाले ती सबै हृदयमा रहेका वरहरू हामी माग्छौं ॥७४-७६॥

हे सर्वव्यापी भगवन् ! जहाँ तपाईंको गालाबाट जन्मेकी अलौकिक नदी गण्डकी बग्दछिन्, त्यस मुक्तिक्षेत्रमा हामीहरू सधैं तपाईंसँग बस्न चाहन्छौं। हे देवताहरूका स्वामी ! जहाँ ब्रह्मा, विष्णु र शिव तपाईंहरू तीनै देवता विराजमान हुनुहुन्छ र जहाँ तपाईंको यो हिमालयको मूर्ति र अलौकिक ज्वाला (ज्वालामाई) छन्, यस मुक्तिक्षेत्रमा नै हामीहरूलाई पवित्र वास दिनुहोस्। जो मनुष्य यस पर्वतमा भक्तिमा साथ वास गर्दछ, त्यो बन्धनबाट मुक्त होस्। जुन मनुष्यले गण्डकीमा नुहाउने छ, त्यसले उत्तमपद पाओस्। जुन मानिसले यस अग्निमा हवन गर्नेछ, त्यो मानिस बन्धनबाट मुक्त होस् ॥७७-८०॥

जुन भाग्यमानी मानिसले यस क्षेत्रमा एक दिन बसेर तपाईंको नै भजन गर्नेछ, त्यसले देवताहरूका लागि पनि दुर्लभ उत्तम पद पाउनेछ। यस मुक्तिक्षेत्रमा जो भाग्यमानी मानिसले खेत, गाई, सुन, चाँदी भाँडा, कपडा र रत्नहरूदान गर्नेछ, त्यसको सबैदान अक्षय होस्। हे भगवान् हरि ! स्वर्गमा र नरकमा रहेका भए पनि सबै पितृहरू मुक्तिक्षेत्रमा गरिएका श्राद्धद्वारा परमगतिमा प्राप्त होऊन् ॥८१-८३॥

श्रीभगवानुवाच

युस्माभिः प्रार्थितं सर्वं तथैवास्तु सुरेश्वराः। मम प्रियतरं क्षेत्रं दुर्लभं सर्वकर्मसु ॥८४॥
कार्तिके च विषेशेण फलं कोटिगुणं स्मृतम्। दैविकं पैतृकं कृत्वा कृतकृत्यो भवेन्नरः ॥८५॥
कार्तिके सकलं मासं यः स्नायाद् भाग्यावान् नरः। सर्वपापविनिर्मुक्तो बैकुण्ठे वसति ध्रुवम् ॥८६॥
अत्र स्नानं जपं होमं श्राद्धं दानं मम स्मृतिम्। कृत्वा कोटिगुणं देवा ! लभते फलमक्षयम् ॥८७॥
भूमौ ब्रह्मादयो देवा ! वासं कुरुत माचिरम्। स्वकं स्वकं च क्षेत्रञ्च स्वभक्तभरणाय च ॥८८॥
एतन्मम प्रियं क्षेत्रं गुप्तं तिष्ठतु सर्वदा। यूयं कालवशात् सर्वे यदा तस्मादुपद्रुताः ॥८९॥
एतस्मिन् मामके क्षेत्रे निर्भयं चागमिष्यथ। इत्युक्त्वा भगवान् विष्णुस्तत्रैवान्तरधीयत ॥९०॥

इति श्रीकश्यपकुलतिलककाश्यपचरणोपासककश्यपगोत्रीयश्रीकाशीरामविरचिते श्रीगण्डकीमाहात्म्ये मुक्तिक्षेत्रस्य कथनं नाम द्वितीयोऽध्यायः ॥२॥

---

श्रीभगवान् विष्णुले भन्नुभयो – हे श्रेष्ठ देवगण हो ! तपाईंहरूले चाहना गरेको कुरा पूर्ण होस्। सबै कर्महरू सम्पन्न गर्न मेरो प्यारो क्षेत्र पाउन गाह्रो छ। देवकर्म र पितृकर्म विशेष गरेर कार्तिक महिनामा फल करोड गुणा बढ्ने मानिएको छ र यसरी देवकर्म र पितृकर्म गर्ने मानिस कृतकृत्य हुन्छ । जुन भाग्यमानी मनुष्यले सारा कार्तिक महिनाभर गण्डकीस्नान गर्दछ, त्यो सबै पापहरूबाट मुक्त भएर वैकुण्ठवासी बन्दछ ॥८४–८६॥

हे देवताहरू ! यस मुक्तिक्षेत्रमा करोड गुणा फल दिने स्नान, जप, होम, श्राद्ध, दान र ईश्वरस्मरण गरेर मानिसले अविनाशी फल प्राप्त गर्दछ। हे ब्रह्माआदि देवगण ! तपाईंहरू आफ्ना भक्तहरूको पालनपोषणका लागि यस पृथिवीमा आ–आफ्ना धामहरूमा छिट्टै निवास गर्नुहोस्। मेरो प्यारो मुक्तिक्षेत्र सधैं गुप्त रहोस्। कालको अधीनमा परेर जुन बेला तपाईंहरू सबै आफ्ना लोकहरूबाट पलायन गर्नुहुनेछ, त्यसबेला भयरहित मेरो यो प्यारो क्षेत्रमा आउनुहुनेछ भनी भगवान् विष्णु त्यहीं अन्तर्धान हुनुभयो ॥८७–९०॥

यसप्रकार कश्यपकुलका श्रेष्ठ काश्यपको चरणको उपासना नर्गे काश्यपगोत्रीय श्रीकाशीरामद्वारा रचित श्रीगण्डकीमाहात्म्यमा 'मुक्तिक्षेत्रको वर्णन' शीर्षक भएको द्वितीय अध्याय समाप्त भयो ॥२॥

# तेस्रो अध्याय : रुरुक्षेत्रको वर्णन

धरण्युवाच

माहात्म्यं मुक्तिक्षेत्रस्य श्रुत्वा त्वद्भाषितं हरे ! मुक्तिदं भुक्तिदं चैतज्जातास्मि विगतज्वरा ॥१॥
रुरुखण्डमिति प्रोक्तं यत्त्वया पूर्वमच्युत !। रुरुर्नाम कथं का वा कदासीद् ब्रूहि मे प्रभो ! ॥२॥
क्षेत्रं प्रसिद्धं यन्नाम्ना हृषीकेश ! त्वयाश्रितम्। कथयस्व जगन्नाथ ! यद्यनुग्राह्यता मयि ॥३॥

---

पृथिवी भन्दछिन् – हे भगवान् हरि ! हजुरको मुखारविन्दबाट भुक्ति र मुक्ति दिने मुक्तिक्षेत्रको माहात्म्य सुनेर सन्तापहीन भएकी छु। हे अच्युत ! पहिले तपाईंले जुन रुरुक्षेत्रको वर्णन गर्नुभएको थियो, ती प्रसिद्ध रुरु को हुन्? र कहिले कसरी भएकी थिइन् भन्ने कुरा मलाई बताउनुहोस्। हे जगन्नाथ हृषीकेश ! जुन रुरू नामबाट प्रसिद्ध रुरुक्षेत्रलाईतपाईंले आफ्नो आश्रय बनाउनुभयो, यदि ममा दया छ भने त्यस विषयमा बताउनुहोस् ॥१–३॥

श्रीवराह उवाच

आसीत् पुरा महाभागे । देवदत्त इति द्विजः । भृगुवंशे समुत्पन्नो वेदवेदाङ्गपारगः ॥४॥
यज्ञविद्यासु कुशलो व्रतनिष्ठोऽतिथिप्रियः । तस्याश्रमपदं पुण्यं नानाद्रुमलतान्वितम् ॥५॥
नानामृगगणाकीर्णं नानापक्षिविराजितम् । वापीकूपतडागादिशोभितं रमणीयकम् ॥६॥
नानापक्षिसमायुक्तं कन्दमूलफलान्वितम् । तत्र तीव्रं तपस्तेपे देवदत्तो मुनीश्वरः ॥७॥
वर्षाणामयुतं साग्रं तदा चेन्द्रो व्यचिन्तयत् । तपसाऽसौ मुनिश्रेष्ठो मत्पदं किं जिहीर्षति ॥८॥
अतोऽस्य तपसो भ्रंशः कर्तव्य इति देवराट् । कामं वसन्तसहितं गन्धर्वाप्सरसां गणम् ॥९॥
उवाच मधुरं वाक्यं स्वभृत्यान् कार्यगौरवात् । हे सखाय उतैतन्मे महत्कार्यमुपस्थितम् ॥१०॥
तस्य कार्यस्य मे सिद्धौ यूयमेव परा गतिः । देवदत्तो मुनिश्रेष्ठो तपते परमं तपः ॥११॥
कुरुध्वं तत्तपोभ्रंशं यूयं मे बान्धवोत्तमाः । तदिन्द्रस्य वचः श्रुत्वा कामदेवादयो गणाः ॥१२॥
प्रत्यूचुर्देवराजं तं देवाज्ञां देहि साम्प्रतम् । देवासुरं नरं वापि वशं ते करवाम भो ! ॥१३॥
इत्युक्तः शतमन्युर्वै प्रत्युवाचाथ मानयन् । जातमेवाखिलं कार्यं ममैतच्छृणुताखिलाः ॥१४॥
हिमशैले महारण्ये हृषीकेशाश्रमे स्थितः । देवदत्तो मुनिर्नूनं जिघृक्षुर्मत्पदं किलः ॥१५॥
तत्र गच्छत यूयं वै तत्तपो विनिवर्त्यताम् । इत्युक्तास्ते तदाज्ञाञ्च गृहीत्वा शिरसा द्रुतम् ॥१६॥
ययुर्वसन्तः कामश्च गन्धर्वा मलयानिलः । प्रम्लोचन्त्यप्सरास्तत्र देवदत्तस्य चाश्रमे ॥१७॥
ते प्राप्य बहुधा तत्र चक्रुरुद्योगमात्मनः । वसन्तो विविधैः पुष्पैश्चकार शोभनं वनम् ॥१८॥
मलयामोदमेहञ्च चकार मलयानिलः । गीतवाद्यादिकं चक्रुर्गन्धर्वा गिरिगह्वरे ॥१९॥
नृत्यं चकार तत्रैव प्रम्लोचन्त्यप्सराः शुभा । शुशुभे तद् वनं रम्यं पद्मचम्पकजातिभिः ॥२०॥
मधुरैः कोकिलालापैर्बर्हिवृन्दविनर्तनैः । मृगपक्षिगणोल्लासैः कामदेववशात्मकैः ॥२१॥

---

श्रीवराह भगवान्ले भन्नुभयो – हे पृथिवी ! पहिले भृगुवंशमा उत्पन्न भएका, वेद र वेदाङ्ग- शिक्षा, कल्प, व्याकरण, निरुक्त, छन्दोविचिति र ज्योतिषमा पारङ्गत, यज्ञविद्यामा कुशल, व्रतहरू गर्ने र पाहुनाहरूलाई प्यारो मान्ने देवदत्त नाम गरेका ब्राह्मण थिए । उनको पवित्र आश्रमस्थान नानाप्रकारका लहराहरू, अनेक थरीका मृगहरूको बथान, विभिन्न प्रकारका चराहरू, तलाउ, कुवा आदि र कन्दमूल र फलहरूले भरिभराउ भएकाले सुन्दर थियो । त्यस आश्रममा मुनिश्रेष्ठ देवदत्तले आलस्य छोडेर १० हजारवर्षभन्दा बढी वर्षसम्म तपस्या गरे ॥४–७॥

देवताहरूका राजा इन्द्रले 'मुनिहरूमा श्रेष्ठ यी देवदत्त (आफ्नो) तपद्वारा के गर्न चाहन्छन्, यसैले यस तपको विनाश गर्नुपर्छ' भन्ने सोचे । कार्यविशेषले गर्दा उनले वसन्त ऋतुका साथ कामदेव, थुप्रै गन्धर्व, अप्सरा र सेवकहरूलाई मीठो स्वरमा भने – हे साथीहरू हो ! मेरो ठूलो काम उपस्थित भएको छ। त्यो मेरो कार्य सिद्धि गर्नमा तिमीहरू नै मुख्य कारण हुन लागेका छौ । मुनिहरूमा श्रेष्ठ देवदत्त ठूलो तपस्या गरिरहेका छन् । तिमीहरू मेरा उत्तम दाजुभाइ हौ र उनको तपस्या भङ्ग गर । इन्द्रको त्यो वचन सुनेर कामदेव आदि सबैले ती इन्द्रलाई भनेका थिए – हे स्वामी ! अहिले आज्ञा दिनुहोस् । हामीले देवता, दैत्य र मनुष्यलाई पनि तपाईंको अधीनमा ल्याउनेछौं ॥५–१३॥

यसप्रकार कामदेव आदि मित्रद्वारा सम्बोधन गरिएका इन्द्रले उत्तर दिए – हे मित्रहरू ! तिमीहरू सबैले सुन, मेरो सारा काम सम्पन्न भइरहेको नै छ। हिमालयपर्वतमा ठूलो वनभित्र रहेको हृषीकेश आश्रममा बसेका देवदत्त ऋषि निश्चय नै मेरो इन्द्रपद ग्रहण गर्ने इच्छाले तप गरिरहेका छन् । हे कामदेव आदि मित्रहरू ! तिमीहरू त्यहाँ जाओ र उनको तपस्या भङ्ग गर ॥१४–१६॥

यसप्रकार इन्द्रको आदेश प्राप्त गरेका ती वसन्त, कामदेव, गन्धर्व, मलयपर्वतको हावा र प्रम्लोचा नामकी अप्सरा सबै इन्द्रको आज्ञा शिरोपर गरेर तुरुन्तै देवदत्तको त्यस आश्रममा गए । तिनीहरूले त्यहाँ पुगेर अनेक किसिमले आ–आफ्नो उद्योग गर्न थाले । वसन्त ऋतुले नानाप्रकारका फूलहरूद्वारा वन राम्रो बनायो । मलयपर्वतको हावाले मलयचन्दनको सुगन्ध सेचन गर्‍यो, गन्धर्वहरूले पर्वतको गुफामा गाउने बजाउने आदि काम गर्न थाले । त्यही आश्रममा नै सुन्दरी अप्सरा प्रम्लोचाले नृत्य प्रस्तुत गरिन् । कामदेवका अधीनमा भएका कमल, चाँपो, जाई नामका फूलहरू, कोइलीका कुहुकुहु शब्दहरू, मयूरका थुप्रै नाचहरू र थुप्रै मृग र चराहरूका उल्लासहरूले त्यो राम्रो वन सुहाएको थियो ॥१९–२१॥

कामेनेत्थं समानीते देवदत्तस्य आश्रमे। प्रविश्य सा वरारोहा गीतं सुमधुरं जगौ ॥२२॥
रमणं भ्रमणं चक्रे कन्दुकद्वयमध्यगा। श्रुत्वा ललितमालापं मुनिः किमिति विस्मितः ॥२३॥
उन्मील्य नयने शीघ्रं ददर्श प्रमदोत्तमाम्। गायन्तीं पञ्चमालापं सर्वावयवशोभनाम् ॥२४॥
तामिवानन्तप्रमदां विश्रान्ताङ्गीं विलोचनाम्। तथैवानन्तावयवां दृष्ट्वा विस्मयमाययौ ॥२५॥

देवदत्त उवाच

उवाचाहो कुतः ! का त्वं किं कार्यं ते वरानने ! । कस्यासि प्रेषिता केन को वा भर्ता तवापि च ॥२६॥
भानोर्गर्भगता भा वा किं भवानी स्वयम्भुवः। सती शम्भोः समानाङ्गी रमा विष्णुपदाश्रया ? ॥२७॥
किं वा वै ब्रह्मण शक्तिः सदसद्रूपधारिणी। मोहिनी ममता माया किं मां मोहयसीति च ॥२८॥
वदतीत्थं मुनौ जेतुं लम्पटो वासवानुजः। वायुर्जहार वासांसि तस्या वासवनोदितः ॥२९॥
दृष्ट्वा मुनिवरं सापि लज्जन्ती मृगलोचना। अङ्गेनाङ्गं गोपयन्ती मुनिं हन्ती कटाक्षकैः ॥३०॥
संस्रद्दुकूलकुसुमकाञ्चीदामावलम्बिनी। रराज मृगशावाक्षी दिव्यावयवविभ्रमैः ॥३१॥
तदा पुष्पमयान् सर्वान् धनुषि पञ्च सायकान्। कामः संयोजयामास प्राप्तावसरहर्षितः ॥३२॥
विव्याध मुनिशार्दूलं यथा व्याधो मृगाधिपम्। मुमोह मुनिमातङ्गोऽनङ्गबाणवशङ्गतः ॥३३॥
पुनर्बभाषे तां मुग्धो गृहीत्वा तत्कराम्बुजम्। कान्ते ! श्रान्ताङ्गलतिके ! भज शान्तिं वदोत्तरम् ॥३४॥
अलं परिश्रमाद् बाले ! कोमलावयवाम्बुजे ! स्वर्णपर्यङ्कसंक्षिप्तकौशेयोपरिशोभने ! ॥३५॥

प्रम्लोचोवाच

सा होवाच मुने ! स्वर्गाद्धृषीकेशपदे शुभे। आगतास्मि हरेराज्ञां पुरस्कृत्याप्सरा इति ॥३६॥
प्रम्लोचा नामतो ब्रह्मन् ! कार्यं मे हरिसेवनम्। पिता पितामहो भर्ता शचीशो मम प्रेषकः ॥३७॥

---

देवदत्तको आश्रम कामदेवद्वारा यसप्रकार राम्ररी सजाइएको थियो। ती सुन्दरी अप्सराले प्रवेश गरेर मीठो गीत गाइन्। दुईवटा भकुण्डोको माझमा रहेकी अप्सराले सुन्दर भ्रमण गरिन्। सुन्दर बोलचाल सुनेर मुनि देवदत्त के होला भन्दै चकित भए। देवदत्तले तुरुन्तै दुबै आँखा खोलेर सबै अङ्गमा थकान महसुस गर्ने तेर्सो नजर गरेर मीठो गीत गाइरहेकी लक्ष्मी जस्ती सुन्दरी उत्तम अप्सरालाई देखे, त्यसपछि ती आश्चर्यमा परे ॥२२–२५॥

देवदत्त भन्दछन् – अहो सुन्दरी ! कसले के कारणले पठाएर कहाँबाट तिमी यहाँ आयौ ? तिमी को हौ ? तिम्रो नाम के हो ? तिम्रा पिता, बाबु वा साथी को हो ? सूर्यको माझमा रहने किरण हौ अथवा ब्रह्माकी पत्नी हौ अथवा उस्तै अङ्ग भएकी शिवकी सती हौ अथवा विष्णुको चरणमा रहने लक्ष्मी हौ ? के तिमी सत्य र असत्य स्वरूप धारण गर्ने ब्रह्माकी शक्ति हौ अथवा मलाई मोहित पार्ने हुँदा मोहिनी हौ अथवा ममता हौ अथवा माया हौ ?। देवदत्तले यसप्रकार प्रश्न गर्दागर्दै आफूले वास गरेका वनबाट निस्केको र जित्न सिपालु इन्द्रको भाइ हावाले अप्सराका शरीरका कपडाहरू पन्छायो ॥२६–२९॥

ऋषिलाई देखेर लाज मान्ने, आफ्ना निर्वस्त्र अङ्गहरूलाई आफ्नै अङ्गहरूले ढाक्ने भएकी कम्मरबाट कपडा झर्न लागेकी, फूलहरूका लामा माला र करधनी लगाएकी प्रम्लोचा तेर्सा आँखाले ऋषिलाई नै घायल पार्दै अलौकिक अङ्ग प्रदर्शनहरूले गर्दा अझ राम्री देखिइन्। त्यस अवसरमा मौका पाएर प्रसन्न भएका कामदेवले आफ्ना सबै फूलका ५ बाणहरूलाई धनुमाथि सन्धान गरे ॥३०–३२॥

शिकारीले सिंहलाई घायल बनाएझैं कामदेवले वीर ऋषिलाई घायल बनाए। कामदेवको बाणको अधीनमा परेका हात्तीजस्ता बलवान् ऋषि मोहित भए। सम्मोहित भएका देवदत्तले कमल जस्तै कोमल हात समातेर ती प्रम्लोचालाई भने – कोमल अङ्गहरूमा थकान भएकी हे सुन्दरी ! शान्त बन र उत्तर देऊ। माथिल्ला अङ्गमा सुनौला र हल्का रेशमी वस्त्रहरूले सुहाएकी र कमल जस्तै कोमल अङ्गहरू भएकी हे बालिका ! परिश्रम नगर ॥३३–३५॥

प्रम्लोचाले उत्तर दिँदै भनिन् – हे ऋषि ! म इन्द्रको आज्ञा स्वीकार गरेर स्वर्गदेखि पवित्र हृषीकेश आश्रममा आएकी एउटी अप्सरा हुँ ॥३६॥ हे ऋषि ! मेरो नाम प्रम्लोचा हो र इन्द्रको सेवा नै मेरो काम हो। मलाई यहाँ पठाउने पिता ब्रह्मा र पति इन्द्र हुन्। गन्धर्व, वसन्त, ऋतु र मलयाचल पर्वतको हावा मेरा मित्रहरू हुन् ॥३६–३७॥

श्रीवराह उवाच

सखायो मम गन्धर्ववसन्तमलयानिलाः। श्रुत्वैतां तन्मुखाद् वाणीं स विप्रः काममोहितः॥३८॥
समालिङ्ग्य च तामाह कान्ते ! कमललोचने !। जानीहि मां तवाधीनं यद् यद् वा कारयिष्यसि॥३९॥
तत्तत्कर्म करिष्यामि तिष्ठात्रैव वरानने !। इत्युक्त्वा स मुनी रेमे हसन्त्याप्सरसा सह॥४०॥
तपः प्रभावोपनतान् दिव्यान् भोगान् दिवानिशम्। बुभुजे भुजपाशेन पुंश्चल्या दृढबन्धितः॥४१॥
सुप्तोत्थित इवाकस्माद् विवेकेन समन्वितः। निर्वेदं परमं प्राप्तस्तदोवाच स भूसुरः॥४२॥
अहो ! भगवतो माया ययाहं मोहितो भृशम्। जानतापि तपोभ्रंशो मया दैववशात्कृतः॥४३॥
अग्निकुण्डसमा नारी घृतकुम्भसमः पुमान्। इति प्रवादो मूर्खाणां विचारान्महदन्तरम्॥४४॥
घृतकुम्भोऽग्नियोगेन द्रवते न तु दर्शनात्। पुमान् स्त्रीदर्शनादेव द्रवते यद्विमोहितः॥४५॥

श्रीवराह उवाच

नापराधोऽत्र वै नार्य्याः स्वयं यदजितेन्द्रियः। इत्युक्त्वाऽसौ निवृत्तात्मा विससर्ज सुराङ्गनाम्॥४६॥
अचिन्तयन्मनस्येतदाश्रमं वेद्मि दूषितम्। उपसर्गो महानत्र तपसो भ्रंशकारकः॥४७॥
त्यक्त्वाश्रममिमं चान्यस्थानं गत्वा समाहितः। तपस्तीव्रं समास्थाय शोषयिष्ये कलेवरम्॥४८॥
इति निश्चित्य मनसा गत्वा भृग्वाश्रमं प्रति। गण्डकीसङ्गमे स्नात्वा सन्तर्प्य पितृदेवताः॥४९॥
विष्णुं शिवञ्च सम्पूज्य तपः स्थानं व्यचिन्तयत्। भृग्वाश्रमं ततो दृष्ट्वा गतवानुत्तरं शनैः॥५०॥
गण्डक्याः पूर्वभागे तु विविक्तविजनं शभम्। दृष्ट्वा तीरे तु विश्रान्तस्तपोभूमिमचिन्तयत्॥५१॥
भृगुतुङ्गं समासाद्य शङ्कराराधने रतः। अतपच्च तपो घोरं शिवदर्शनलालसः॥५२॥
अथ दीर्घेण कालेन सन्तुष्टः स महेश्वरः। लिङ्गरूपधरः साक्षादुपप्राप्तो धरातले॥५३॥

---

श्रीवराहले भन्नुभयो – कामवासनाले गर्दा मोहित भएका ती ब्राह्मण देवदत्तले अप्सराका मुखबाट निस्केको यो बोली सुनेर तिनलाई अँगालो मारेर भने – कमल जस्ता आँखा भएकी हे सुन्दरी ! मलाई तिम्रो अधीन भएको जान। अथवा जे जे गराउली त्यो त्यो काम गर्नेछु। हे सुमुखी ! यस आश्रममा नै बस। यति भनेर ती ऋषिले हँसिली अप्सरा साथ भोगविलास गरेका थिए। यसरी वेश्याको अँगालोमा बेसरी बाँधिएका ऋषिले रातदिन तपस्याका शक्तिले पाएका अलौकिक भोग प्राप्त गरे॥३८–४२॥

सुतेर जागेझैं एकाएक विवेकले सम्पन्न भएका र आतुर गति भएका ऋषिले परम वैराग्य प्राप्त गरी मनमनै भने – आश्चर्य छ, भगवान्‌को मायाद्वारा म साह्रै मोहित भएँ। जानेर पनि मैले दैवको अधीनमा परेर आफ्नो तपस्या गरेँ। नारी अग्निकुण्डसमान तापले युक्त हुन्छिन् र घिउको गाग्रो जस्तै पग्लने स्वभाव भएको पुरुष हुन्छ भन्ने हल्ला मूर्खहरूको मात्र हो, विचार गर्दा दुवैमा ठूलो फरक छ। घिउको गाग्रो आगोमा संयोग हुँदा मात्र पग्लन्छ तर पुरुष नारीको दर्शन पाउनासाथ पग्लन्छ, त्यसैले आज म मोहित भएँ। यदि पुरुष इन्द्रिय जित्न सक्दैन भने यस विषयमा स्त्रीको दोष छैन॥४३–४५॥

श्रीवराहले भन्नुभयो – यसरी पछुतोको कुरा गरेर आत्मा शान्त भएका देवदत्तले अप्सराको परित्याग गरे र गहिरिएर विचार गरी मनमनै सोचे– यहाँ तपस्याको नाश गर्ने ठूलो विघ्न पर्‍यो। तसर्थ यो आश्रमस्थल दूषित भएको हो। यो आश्रम छाडी अन्यस्थानमा गएर समाधिलगाएर घोर तपस्या गरीआफ्नो शरीर सुकाउने छु। मनमा यस्तो निश्चय गरेर, भृगु आश्रमतिर गएर गण्डकीहरूको सङ्गममा नुहाएर, पितृहरूलाई तर्पण दिएर, विष्णु र शिवको पूजा गरी उनले फेरि तपस्या गर्ने ठाउँको विषयमा चिन्तन गरे। त्यसपछि ती ऋषि भृगु आश्रम देखेर बिस्तारै उत्तरतर्फ गए॥४७–५०॥

गण्डकीको पूर्वतर्फ एकान्त निर्जन ठाउँ देखेर र तीरमा विश्राम गरी उनले तपस्या गर्ने स्थानको विषयमा चिन्तन गरे। रुरुक्षेत्र पारीको भृगु ऋषिले तपस्या गरेको भृगुतुङ्गमा गएर शङ्करको आराधनामा लागे र शिवको दर्शनको इच्छा गरी घोर तपस्यामा पनि लागे। त्यसपछि दीर्घ तपस्याले सन्तुष्ट भएका शङ्कर लिङ्गरूप धारण गरेर पृथिवीमा प्रकट हुनुभयो॥५१–५३॥

तिर्यग्भिर्जलधाराभिर्युक्तस्तत्तापशान्तिकम्। उवाच स प्रसन्नात्मा मुने। मां पश्य शङ्करम् ॥५४॥
मामेवावेहि विष्णु त्वमावयोरन्तरं क्वचित्। पूर्वमन्तरभावेन दृष्टवानसि यन्मम ॥५५॥
श्रुत्वा शिवमुखोत्पन्नां सदयां भारतीं द्विजः। हर्षेण महताविष्टस्तुष्टाव शिवकेशवौ ॥५६॥

देवदत्त उवाच

जय योगदभोगददानवदौ। भवभीमभवावनभूतगतौ ।। जय शुभ्रतनोऽभ्रतनोऽहिधनौ धनदावनशक्रसखाजसखौ ॥५७॥
जय गोत्रजयान्वितमोक्षप्रदौ। प्रधनौ। त्रिकचक्रधरप्रणवौ।। वृषवाहन। तार्क्ष्यग। शूलधर। त्रिपुरघ्न। मधुध्रुगनन्तनुतौ ॥५८॥
शशिभस्मत्वगम्बरभूषणस्त्रङ्मणिपीतदुकूलधरश्रुतिदौ ॥ श्रुतिगीततथागमगीतशिवौ जयतं त्रिगुणात्मतनू वरदौ ॥५९॥
जय भूतकृदष्टतनो। त्रितनो। त्रिगुणेश। त्रयीमय। तुर्यतनो।। विषमाक्ष। चतुर्भुज। भूभरदौ। भव। भर्ग। हरे। जितलिङ्गतनो। ॥६०॥
जयतं शतमूर्त अनन्तपदौ। परमार्थद। अर्थदनाममनू। मनुमानसजादिकपूज्यतनू तनुसर्वद। सर्वग। खर्वतनो। ॥६१॥
तनुभूमिभवोदयकोटिकृतौ कृतकल्मषकण्ठकपालसरित्। भृगुलाञ्छनहृच्छ्रुतिप्रीतियुतौ। युगधर्मधरामरदेवहितौ। ॥६२॥
जितकालकलापकलापभृतौ धृतशेष। जय ध्रुवसत्यदद।। पदपञ्चप्रपञ्चकबोधबुधौ। जय षट्पद। षट्पदरूपधरौ ॥६३॥
जय पञ्चतनो। त्रितनो। वितनो। जय विश्वतनो। विविधात्मतनो।। प्रणमामि सदात्मभुवे हरये प्रणमामि नमामि भवाय च ते ॥६४॥

---

ऋषिको ताप शान्ति गर्ने तेर्सो जलधारासहित प्रकट हुनुभएका र प्रसन्न आत्मा हुनुभएका शङ्कर भगवान्ले भन्नुभयो – हे ऋषि। म शङ्करलाई हेर। मलाई तिमीले विष्णु नै जान। कुनै समयमा मात्र हामी दुईमा भेद छ। यसभन्दा पहिले तिमीले मप्रति भेददृष्टि राखेका थियौ। ऋषिले शङ्करको मुखबाट निस्केको कृपापूर्ण वचन सुनेर अत्यन्त प्रसन्नताका साथ हरिहरको स्तुति गर्न लागे ॥५४–५६॥

देवदत्तले भन्दछन् – दैत्यहरूलाई वर दिने र तारकासुर आदि दैत्यहरूको वध गर्ने, संसारका लागि डरलाग्दा भएर पनि संसारको नै रक्षा गर्ने प्राणीहरूमा व्याप्त, योग र भोग दिने हे शिव। हे विष्णु। जय होस्। सेतो र बादलजस्तो शरीर भएका, नागहार र नागशय्या नै धन भएका, कुबेरको रक्षा गर्ने, इन्द्र र ब्रह्मा मित्र भएका हे शिव। हे विष्णु। तपाईंहरूदुबैको जय होस्। साँढे र गाईको रक्षा गर्ने जया र जयले युक्त भएका वा इन्द्र वा असुरकुलको विजयले युक्त भएका, मोक्ष र धन दिने, त्रिशूल वा त्रिक शास्त्र र चक्र धारण गर्ने र ओंकार स्वरूप भएका, साँढे र गरुडलाई वाहन बनाउने, त्रिशूल धारण गरेर तारकासुरका तीन शहरको विनाश गर्ने र मधुसँग द्रोह गर्ने तथा शेषद्वारा स्तुति गरिएका हे शिव। हे विष्णु तपाईंहरूको जय होस्॥५७–५८॥

चन्द्रमा, खरानी, रुखका बोक्रा धारण गर्ने र कपडा, गहना, मणिमाला र पहेँलो उत्तरीय धारण गर्ने र ज्ञानदाता, वेद र आगमशास्त्रद्वारा गान गरिएको मङ्गलस्वरूपयले सम्पन्न, त्रिगुणस्वरूप र वरदाता हे विष्णु। हे शिव। तपाईंहरूदुबैको जय होस्। भूतप्रेत आदिलाई र पञ्चमहाभूतलाई फैलाउने, सूर्य, चन्द्र आदि अष्टमूर्ति र ब्रह्मा आदि तीन स्वरूप भएका, तीन गुण (सत्त्व आदि) का स्वामी, ऋक् आदि तीनवेदस्वरूप, आत्माको चौथो अवस्थास्वरूप, तीन आँखा र चार हात हुने, पृथिवीको भारहरण गर्ने, कल्यायणमय, पापहरण गर्ने र सूक्ष्मशरीरलाई आफ्नो अधीन गर्ने (हे शिव हे विष्णु। तपाईंहरूदुबैको ) जय होस्। सयौं मूर्ति भएका, असंख्य चरण भएका, मोक्ष दिने नाम र मन्त्र सार्थक हुने, मनु र सनकादिद्वारा पूज्यस्वरूप भएका, देहधारणद्वारा सबथोक दिने, सबै ठाउँमा व्याप्त र वामनावतारमा सानो शरीर पनि लिने (हे शिव। हे विष्णु।) तपाईंहरूदुबैको जय होस्। लोककल्याणका लागि कोटि कोटि रूप धारण गर्ने, पापनाशिनी गङ्गालाई शिरमा धारण गर्ने, हृदयमा भृगु ऋषिको चरण चिन्ह धारण गर्ने र वेदमा प्रीति राख्ने, युगधर्म, ब्राह्मण र देवताहरूको हित गर्ने हे शिव। हे विष्णु। तपाईंहरूदुबैको जय होस्॥५९–६२॥

कालविजयी, मयूरका प्वाँखहरू र अनन्त नागलाई धारण गर्ने तपाईंहरूदुबै शिव र विष्णुको जय होस्। ध्रुवलाई सत्य दिने हे विष्णु तपाईंको जय होस्। मायाका पाँच पदहरूविद्या, कला, राग र नियतिको विस्तार गर्ने ज्ञानका गुरु, वेदका ६ अङ्गस्वरूप र वेदस्वरूप षडक्षरी मन्त्रका स्वरूप भएका र ब्रह्मरूपी कमलको आस्वाद लिन भ्रमरको रूप धारण गर्ने हे शिव। हे विष्णु। तपाईंहरूको जय होस्, जय होस्। पाञ्चायनस्वरूप, तीन (ब्रह्मा आदि) स्वरूप, विशिष्टस्वरूप र विश्वरूप धारण गर्ने शिव र विष्णु। तपाईंहरूको जय होस् –जय होस्। सनातन विष्णु। तपाईंलाई नमस्कार छ, कल्याणमय – शिव। तपाईंलाई बारम्बार नमस्कार छ ॥६३–६४॥

श्रीवराह उवाच

एवं स्तुवति तत्रैव देवदत्तस्य चाग्रतः । तपःप्रभावाल्लिङ्गानि प्रादुर्भूतानि भूरिशः ॥६५॥
सत्यङ्गमिति विख्यातमेतत्स्थानमभूद् यतः । सन्तुष्टः शङ्करस्तत्र पुनर्वचनमब्रवीत् ॥६६॥

श्रीशिव उवाच

स्नात्वाऽत्र गण्डकीतीर्थे मम लिङ्गानि योऽर्चयेत् ।तस्य योगफलं सम्यग्भविष्यति न संशयः ॥६७॥
इति दत्त्वा वरं शम्भुस्तत्रैवान्तरधीयत । देवदत्तोऽपि स मुनिर्गण्डकीसङ्गमे स्थितः ॥६८॥
संप्राप्य शिवतो ज्ञानं साक्षाद् हरिहरात्मकम् । शिवोपदिष्टमार्गेण सायुज्यं परमं गतः ॥६९॥
प्रम्लोचापि मुनेर्गर्भं संप्राप्याश्रमसन्निधौ । प्रसूता कन्यकां त्यक्त्वा स्वर्गमेव जगाम ह ॥७०॥
इन्द्राय कथयामास सर्वमेव पराक्रमम् । सापि कन्या मृगैस्तत्र रुरुभिर्वर्धिता सती ॥७१॥
रुरुरित्येव विख्याता पितुरेवाश्रमे स्थिता । युवभिः प्रार्थ्यमानापि चित्ते कञ्च न साध्यताम् ॥७२॥
ततः सुनिश्चयं कृत्वा तपसे धृतमानसा । चिन्तयन्ती जगन्नाथं भगवन्तं रमापतिम् ॥७३॥
मासे सा प्रथमे बाला फलाहारपरायणा । एकान्तरं दिनं प्राप्य द्वितीये त्रिदिनान्तरे ॥७४॥
तृतीये पञ्चमदिने चतुर्थे सप्तमान्तरे । पञ्चमे च पराकेन षष्ठे पञ्चदशाहके ॥७५॥
मानसे सप्तमे चैव शीर्णपर्णाशिनाष्टमे । त्यक्त्वा तान्यपि सा बाला वाय्वाहार बभूव ह ॥७६॥
एवं वर्षशतं स्थित्वा हरावेकाग्रमानसा । समाधिना समा भूत्वा स्थाणुवन्निश्चलाभवत् ॥७७॥
द्वन्द्वानि नाविदच्चापि आत्मभूतान्तरं विना । परां काष्ठां समापन्ना प्रकाशमयकान्तिधृक् ॥७८॥
तत्तेजसावृतं सर्वं तदा दृष्ट्वा वसुन्धरे ! । अहं विस्मयमापन्नस्तस्याः प्रत्यक्षमागतः ॥७९॥

---

श्रीवराहले भन्नुभयो – यसरी स्तुति गरेपछि त्यस ठाउँमा तपस्याको प्रभावले देवदत्तको अगाडि नै थुप्रै शिवलिङ्ग उत्पन्न भए । त्यसपछि यो ठाउँ सत्यङ्ग नामले प्रख्यात भयो । त्यहाँ प्रसन्न भएका शङ्करले फेरि देवदत्त ऋषिलाई भन्न लाग्नुभयो ॥६५–६६।

शिवजी भन्नुहुन्छ – जुन मानिस त्यस गण्डकीतीर्थमा नुहाएर मेरा लिङ्गहरूको पूजा गर्दछ, त्यस (मानिस)को योगसाधनाको फल राम्रो हुनेछ भन्ने कुरामा शङ्का छैन ॥६७॥ यसप्रकार वर दिएर भगवान् शङ्कर त्यस ठाउँमा अदृश्य हुनुभयो । देवदत्त ऋषि पनि गण्डकीको सङ्गममा बसेर साक्षात् शिवबाट नै हरिहरात्मक ज्ञान पाएर शिवले उपदेश दिएको पद्धतिबाट शिवको स्वरूपमा प्राप्त भए ॥६८–६९॥

प्रम्लोचा अप्सराले पनि देवदत्तऋषिको गर्भधारण गरेर हृषीकेश आश्रम समीपमा सुत्केरी भै कन्यालाई त्यहाँ छोडेर स्वर्ग गइन् । ती प्रम्लोचाले आफ्नो पराक्रम इन्द्रलाई बताइन् । सद्योजात कन्या पनि त्यस आश्रममा रुरु मृगहरूद्वारा पालिएर रुरु नामले नै प्रसिद्ध भईबाबुको आश्रममा नै बसिन् । युवकहरूले प्रार्थना गरिदा पनि चित्तमा कसैलाई पनि राखिनन् । त्यसपछि तपस्याको निम्ति मनमा कठोर निर्णय गरी मनलाई वशमा पारी जगन्नाथ भगवान् विष्णुको चिन्तन गर्दै पहिलो महिनामा एक दिन, दोस्रो महिनामा तीन दिन, तेस्रो महिनामा पाँच दिन, चौथो महिनामा सात दिन, पाँचौ महिनामा पराकव्रत अर्थात् १२ दिन, सातौं महिनामा १ महिना बिराएर मात्र फलाहार गरी बालिका रुरु आठौं महिनामा सुकेका पात मात्र खाने भइन् र पछि त्यो सबै छोडेर बालिका रुरु वायुपान मात्र गर्ने भइन् ॥७०–७६॥

यसप्रकार सय वर्षसम्म भगवान् विष्णुमा मन एकाग्र गरी समाधिसाधना गर्दा सुख दुःख आदिमा समान दृष्टिको उदय हुँदा मूढोजस्तै अचल भइन् । समाधिको परमानन्दमा निमग्न भएकी रुरुकन्यालाई प्रवृत्तिधर्मको ज्ञान भएन । आत्मप्रकाशको कान्तिले नुहाएकी उनी समाधिसाधनाको चरमसीमामा प्राप्त भइन् । हे पृथिवी ! त्यसबखत सारा पृथिवीलाई रुरुकन्याको तेजमा डुबेको देखेर म चकित भएँ र तिनका सामु प्रत्यक्ष भएँ ॥७७–७९॥

सन्निरुद्धेन्द्रियग्रामा नाचक्षत बहिः स्थितम्। तदा हृषीकमाविश्य संहृत्य स्वं गतो बहिः ॥८०॥
स्थितोऽहं वसुधे ! विष्णुः क्षणे प्रत्यक्षतां गतः। हृषीकाणि नियम्याहं यतः प्रत्यक्षतां गतः ॥८१॥
हृषीकेश इति ख्यातो नाम्ना तत्रैव संस्थितः। सा मां यदा च नापश्यदुन्मील्य नयने तदा ॥८२॥
बहिः स्थितञ्च मां दृष्ट्वा प्रणनाम कृताञ्जलिः। गद्गदस्वरसंयुक्ता साश्रुक्लिन्नविलोचना ॥८३॥
रोमाञ्चिततनुश्चासीत् कदम्बमुकुलाकृतिः। तथाभूतान्तु तां दृष्ट्वा प्रावोचं मङ्गलं वचः ॥८४॥
अयि बाले ! विशालाक्षि ! तुष्टोऽहं तपसा तव। वरं याचय मत्तस्त्वं यत्ते मनसि वर्तते ॥८५॥
अदेयमपि ते दद्मि यदन्येषां सुदुर्लभम्। इति श्रुत्वा प्रभोर्वाक्यं प्रणम्य च पुनः पुनः ॥८६॥

रुरुरुवाच

तुष्टाव देवदेवेशं प्रबद्धकरसंपुटा। ददासि चेद् वरं मह्यं देवदेव ! जगत्पते ! ॥८७॥
अनेनैव च रूपेण भगवन् ! स्थातुमर्हसि। स्थित्वात्र भुक्तिं मुक्तिञ्च पितृणामुद्धृतिं पराम् ॥८८॥

श्रीभगवानुवाच

कुर्वन् कल्पसहस्रान्तं तिष्ठ मज्जनकाश्रमे। स्थितोऽस्म्यत्रैव भद्रं ते अपरं वरयाशु भो ! ॥८९॥
दुर्लभं ते वरं दद्मि तपसाहं प्रतोषितः। इत्युक्ता मां प्रणम्याह रुरुः सा संशितव्रता ॥९०॥
यदि प्रसन्नो देवेश ! तदा मां पावनीं कुरु। मन्नाम्ना क्षेत्रमेतच्च ख्यातं भवतु नान्यथा ॥९१॥
तामहं सुभगे ! देवि ! प्रावोचं पुनरेव हि। रुरुक्षेत्रमिति ख्यातं क्षेत्रमेतद् भविष्यति ॥९२॥
तव क्षेत्रे कृतस्नानस्त्रिरात्रोपोषितो नरः। विलोक्य मां भवेत् पूतो मम वाक्यान्न संशयः ॥९३॥
इति दत्वा वरांस्तस्यै तत्रैवान्तर्हितः स्थितः। एतत्ते कथितं देवि ! रुरुमाहात्म्यमुत्तमम् ॥९४॥
रुरुक्षेत्रस्य प्रभवमेतद् गुह्यं परं मम। ज्ञात्वात्र कुरुते कर्म सर्वपापैः प्रमुच्यते ॥९५॥

इति काश्यपकुलतिलककाश्यपचरणोपासककश्यपगोत्रीयश्रीकाशीरामविरचिते गण्डकीकाहात्म्ये रुरुक्षेत्रप्रभावो नाम तृतीयोऽध्यायः।

---

सारा इन्द्रियहरू रोकेकी रुरुले बाहिर प्रकट भएको मलाई देखिनन्। हे पृथिवी ! त्यस समयमा बाहिर आफूलाई रोकेर उनको इन्द्रियहरूमा प्रवेश गरी आँखाको अगाडि उभिएको हुँदा नै म हृषीकेश अर्थात् इन्द्रियहरूको स्वामी नामबाट नै त्यहाँ प्रसिद्ध भएर बसेँ। जब उनले मलाई भित्र देखिनन्, त्यतिखेर आँखा खोलेर बाहिर बसेको मलाई देखेर गद्गद स्वर गर्दै आँखाभरि आँसु लिएकी रुरुले हात जोडी प्रणाम गरिन् ॥८०-८३॥

त्यस अवस्थामा बालिका रुरु शरीरमा रोमाञ्च भएकी र कदमको कोपिलाझैँ खुम्चिएकी थिइन्। त्यस्ती उनलाई देखेर उत्सव जस्तै मङ्गल कुरा मैले भनेँ – विशालनयनी हे बालिका ! म तिम्रो तपद्वारा प्रसन्न छु। तिमीले जे चिताएकी छौ मबाट त्यो वर माग। अरूका लागि दुर्लभ र दिन नमिल्ने वर पनि म तिमीलाई दिन्छु । प्रभुको यस्तो वाक्य सुनेर बारम्बार नमस्कार गर्दै बालिका रुरुलेदुबै हात जोडी देवताका पनि देवता भगवान् हृषीकेशको स्तुति गरिन् ॥८४-८६॥

रुरुले भनिन् – हे जगन्नाथ विष्णु ! यदि तपाईं मलाई वर दिनुहुन्छ भने यही चतुर्भुजरूपमा यहीं विराजमान हुनुहोस्। हे भगवान् ! हजुरभक्तहरूलाई भोग एवं मोक्ष प्रदान गर्दै तथा पितृहरूको उद्धार गर्दै हजार कल्पसम्म यही ठाउँमा मेरा बुबाको आश्रममा विराजमान हुनुहोस् ॥८७-८८॥

श्रीभगवान्ले भन्नुभयो – हे रुरुकन्या ! म यहीं बसेको छु, तिम्रो कल्याण होस्, तुरुन्त अरू वर माग। म तिम्रो तपस्याबाट सन्तुष्ट भएको छु र तिमीलाई दुर्लभ वर पनि दिन चाहन्छु। यसरी सोधिएकी र आफ्नो व्रतमा सन्देह गर्ने ती रुरुकन्याले मलाई प्रणाम गर्दै भनिन्– हे देवताका स्वामी (विष्णु) ! यदि तपाईं प्रसन्न हुनुहुन्छ भने यसै समयमा मलाई पवित्र तुल्याउनुहोस्। यो क्षेत्र पनि मेरो रुरुनामबाटै प्रख्यात होओस् अर्थात् रुरुक्षेत्र भनी विख्यात होस् ॥८९-९१॥

हे सौभाग्यवती पृथिवी ! मैले ती कन्या रुरुलाई फेरि भनेँ – यो क्षेत्र संसारमा रुरुक्षेत्र भनेर विख्यात हुनेछ। तिम्रो नाम जोडिएको यस रुरुक्षेत्रमा स्नान गरेर ३ रात उपवास बस्ने मानिस मेरो दर्शन पाएपछि पवित्र हुनेछ। यो म आफैँले बोलेको वाक्य भएकाले यसमा कुनै सन्देह गर्नुपर्दैन। यसप्रकार रुरुकन्यालाई उनले मागेअनुसार वर प्रदान गरी म त्यसै रुरुक्षेत्रमा बसेँ। हे पवित्र पृथिवी ! मैले तिमीलाई रुरुक्षेत्रको त्यही महिमा बताएँ। रुरुक्षेत्रको आविर्भाव भएको यो आख्यान अत्यन्त गोपनीय छ। रुरुक्षेत्रको महिमा र आविर्भाव प्रसङ्ग थाहा पाएर तदनुसार रुरुक्षेत्रमा उत्तम कार्य गरेपछि मानिस सबै किसिमका पापबाट मुक्त हुन्छ ॥९२-९५॥

यसप्रकार कश्यपगोत्रका श्रेष्ठ काश्यपका चरणको उपासना गर्ने कश्यपगोत्री श्रीकाशीरामद्वारा रचित गण्डकीमाहात्म्यमा रुरुक्षेत्रप्रभव नामक तेस्रो अध्याय समाप्त भयो।

# चौथो अध्यायः रामपुरक्षेत्रवर्णन

श्रीभगवच्छर्मोवाच

भगवन् ! साधवो लोके सर्वज्ञा नात्र संशयः । कथं रामपुरं नाम वदन्ति मनुजा द्विज ! ॥१॥
पारकोटं कथञ्चात्र नेपालञ्चापि तद् वद । सर्वज्ञोऽसि महाबुद्धे ! संशयं छिन्धि मे किल ॥२॥

श्रीकाशीराम उवाच

शृणु ब्रह्मन् ! पुराणेषु यदुक्तं वंशवेदिभिः । तत्तेऽहं सम्प्रवक्ष्यामि देशवार्तां यथामति ॥३॥
सूर्यवंशे महाविष्णू रामो दाशरथिः प्रभुः । ब्रह्मणा प्रार्थितो भूमेर्भारसन्तारणाय च ॥४॥
अयोध्यानगरे जातो युवा स जानकीयुतः । जगाम गण्डकीतीर्थे मुक्तिक्षेत्रे क्रमेण च ॥५॥
तत्र मण्डपिकां रामो ददर्श रमणीमिव । विकसत्पद्मवदनां रसालपल्लवाधराम् ॥६॥
विदीर्णदाडिमीदन्तां त्वग्गूढशुकनासिकाम् । श्रितखञ्जनलोलाक्षीं भ्रमत्षट्पदभ्रूलताम् ॥७॥
द्वीपस्थतटसद्भालां गण्डकीजलवेणिकाम् । पद्मनाललसद्बाहुं स्थूलबिल्वफलस्तनीम् ॥८॥
सदावर्तकगम्भीरह्रदनाभिविराजिताम् । लसद्वालुकसद्वेदीबलित्रयशुभोदराम् ॥९॥
तटसूक्ष्मकटीं तीर्थशिलास्निग्धनितम्बिनीम् । रम्भास्तम्भोरुकां पद्मप्रफुल्लपादपल्लवाम् ॥१०॥
ब्रीहिबाहुल्यवसनां फलपुष्पकस्वामिनीम् । नारायणपतिमतीं केशादिगर्भधारिणीम् ॥११॥
रम्भारसालजम्बीरनारङ्गपनसेक्षुभिः । नित्यं सत्रवतीं शालिमुद्गमाषयवादिभिः ॥१२॥
छायासम्पादिनीं सद्भ्यो वटाश्वत्थशमीद्रुमैः । खदिरबदरीजम्बूमलयोदुम्बरादिभिः ॥१३॥
धात्रीविल्वार्कतुलसीजातिचम्पकमण्डिताम् । अभयाभयदां नित्यं भल्लातकभयप्रदाम् ॥१४॥

---

भगवत्शर्मा भन्दछन् – हे भगवन् ! यस लोकमा तपाईंजस्ता सज्जनहरू सर्वज्ञ हुन्छन्,यसमा शङ्का छैन । हे ब्राह्मण ! मानिसहरू रामपुरलाई किन प्रसिद्ध मान्दछन् ? नेपाल र पारकोट पनि किन भनियो ?यी प्रश्नको उत्तर बताउनुहोस् । हे बुद्धिमानहरूमा श्रेष्ठ ! तपाईं सबै कुरा जान्नुहुन्छ, त्यसैले मेरो शङ्का हटाउनुहोस् ॥१–२॥

श्रीकाशीराम भन्दछन् – हे ब्राह्मण ! वंशावलीका ज्ञाताहरूले पुराणहरूमा भने अनुसार रामपुर, पारकोट आदि क्षेत्रहरूको म यथामति वर्णन गर्दछु, सुन । सूर्यवंशमा राजा दशरथका छोराका रूपमा भगवान् महाविष्णु ब्रह्माको प्रार्थना अनुसार पृथिवीको भारहरण गर्नका लागि अयोध्या नगरमा पैदा भई आफ्नी धर्मपत्नी सीताजीका साथ क्रमशः गण्डकीदर्शन र मुक्तिक्षेत्रमा जानुभयो ॥३–५॥

गण्डकीक्षेत्रको पाल्पा अन्तर्गत पर्ने रामपुरमा पुग्नुभएका भगवान् रामले त्यहाँ रमणीजस्तै सुहाएको सुन्दर मण्डपिकालाई देख्नुभयो । ती मण्डपिकाले विकसित कमललाई सुन्दर अनुहारका रूपमा धारण गरेकी थिइन् । त्यसै गरी आँपका राता पालुवालाई ओठका रूपमा, पाकेर फुटेका दाडिमका दानालाई दन्तपङ्क्तिका रूपमा धारण गरी सुहाएको वृक्षका टेड्कामा बस्ने सुगालाई नासिकाका रूपमा, खञ्जन चरालाई चञ्चल आँखाका रूपमा, भूँ भूँ गरी उडिरहेका भ्रमराहरूलाई आँखीभौँका रूपमा, द्वीपको तटलाई चौडा निधारका रूपमा, कालीगण्डकीको प्रवाहलाई चुल्ठोका रूपमा धारण गर्ने तिनी अति नै राम्री देखिएकी थिइन् । उनले कमलनाललाई सुकुमार हातका रूपमा, ठूला ठूला बेलका फललाई स्तनका रूपमा, गहिरा ताल–तलाउका भुमरीहरूलाई गहिरो नाभिका रूपमा, राम्ररी चम्किने वेदीलाई पेटको त्रिबलि अर्थात् तीन रोमरेखाका रूपमा, नदीतीरलाई बाउले कम्मरका रूपमा, नदीका चिल्ला ढुङ्गालाई नितम्बका रूपमा, केराका स्तम्भहरूलाई तिघ्राका रूपमा, फुलेका कमललाई चरणका रूपमा, पहेँलपूर धानका खेतलाई वस्त्रका रूपमा, फलफूलका पङ्क्तिलाई मालाका रूपमा, नारायणलाई पतिका रूपमा धारण गरेकी थिइन् । त्यसै गरी सूर्य, चन्द्र आदिका किरणलाई गर्भका रूपमा धारण गेर केरा, आँप, ज्यामिर, कटहर, उखु, शालिधान, मुँगी, मास, जौ आदिको वितरण गरी अन्नको सदावर्त लगाउने, वर, पीपल, शमी, खयर, बयर, जामुनो, मलय, डुम्री आदि वृक्षद्वारा सज्जनहरूलाई छाया प्रदान गर्ने, अथवा बेत, आँक, तुलसी, चाँपो आदि वृक्षले सुहाएको अभया अर्थात् हर्रो धारण गरी सबैलाई अभय दान गर्ने, भलायो धारण गरी शत्रुलाई भय प्रदान गर्ने कार्य गरेकी थिइन् ॥६–१४॥

पर्कटीसत्प्रसादाग्रां कलिवृक्षप्रकोपनाम्। अरिष्टारिष्टशमनीं सेहुण्डदण्डगर्विणीम् ॥१५॥
हंसगत्या गतिमतीं चक्रवाग्वचनाकुलाम्। शुकवाक्सत्यवचनां पिकालापामृतस्वराम् ॥१६॥
व्रतदानतपोयज्ञचतुर्द्वारगृहेश्वरीम्। भवभीतातिथिभ्यश्च मुक्तितण्डुलदायिनीम् ॥१७॥
अनया रमणं क्षेत्रं दृष्ट्वा रामोऽतिहर्षितः। क्षेत्रं रामपुरं नाम चकार ग्राममुत्तमम् ॥१८॥
तिष्ठति सीतया सार्द्धं रामोऽत्रैव युगे युगे। ददाति तारकं रामो मृतकेभ्योऽत्र सर्वदा ॥१९॥
ज्ञात्वैतत्तज्जपेनैव स्थेयं रामपुरे शुभे। कर्तव्यानि च कर्माणि मन्त्रतन्त्रोदितानि च ॥२०॥
कल्पादौ च युगादौ च मन्वादावष्टकादिषु। क्षयाहे पार्वणे सूर्यसंक्रान्तौ राहुदर्शने ॥२१॥
कार्तिके माधवे माघे मार्गशीर्षे निरन्तरम्। पैतृकं दैविकं कर्म कृत्वा रामपुरे पुमान् ॥२२॥
स गच्छेत् परमं स्थानं यद् विष्णोः परमं पदम्। शिवभक्तोऽपि शुद्धात्मा गच्छेत् शिवपुरं शुभम् ॥२३॥
पार्वणे पार्वणं यो वै करोत्यत्र यथाविधि। नीयते नगरे विष्णोः कुलमेकोत्तरं शतम् ॥२४॥
संक्रान्तौ कुरुते योऽत्र दैविकीं पैतृकीं क्रियाम्। स वै कुलशतं नीत्वा वैकुण्ठे याति सर्वदा ॥२५॥
ग्रहणे कर्मकृच्चात्र संभेद्य रविमण्डलम्। स्वकुलं सकलं नीत्वा स गच्छेत् परमं पदम् ॥२६॥
कार्तिके कृतकर्माऽत्र कोटिजन्मार्जितैनसम्। त्यक्त्वा ब्रह्मपुरं कल्पं स्थित्वा मुक्तिपदं व्रजेत् ॥२७॥
वैशाखे व्रतकृद् विष्णोः स्थित्वा रामपुरे नरः। कोटिकल्पं स बैकुण्ठे स्थित्वा सायुज्यमाप्नुयात् ॥२८॥
माघे रामपुरे यो वै स्नानदानादिकं नरः। करोति स वसेद्धातुरन्तिकं द्विपरार्द्धकम् ॥२९॥
प्राप्य सिद्ध्यष्टकं सिद्धः सोऽव्याहतगतिः किल। गत्वा वैकुण्ठभवने विष्णुसारूपयतां ब्रजेत् ॥३०॥
मार्गशीर्षेऽपि सत्कर्म यः करोति पुमानिह। ब्रह्माण्डभवनेऽसौ वै यथेष्टगतिको भवेत् ॥३१॥

---

पाखरी धारण गरी सबैलाई प्रसन्नता प्रदान गर्ने, बर्रो वृक्षद्वारा दुष्टहरूमाथि रीस देखाउने, रिट्ठो धारण गरी सबैका अरिष्ट नाश गर्ने, सिउँडीको लाठी देखाएर अरूका घमण्ड तोड्ने, हाँसको गतिमा हिँडेको आभास दिने, चखेवाको वचनबाट विरहका गीत गाउने, सुगाको बोलीद्वारा सत्य संवाद गर्ने, कोइलीको अमृतमय स्वरद्वारा मीठा वचन सुनाउने, व्रत, दान, तपस्या र यज्ञका द्वार खुलाएकी गृहिणीसमान देखिने ती मण्डपिकाले संसारसागरबाट डराएका मुक्तिका पथिक सज्जन पाहुनाहरूका लागि मुक्तिको भिक्षा दिने काम गरेको अनुभव हुन्थ्यो ॥१५-१७॥

यस मण्डपिका द्वारा सुन्दर भएको गण्डकीक्षेत्र देखेर प्रसन्न हुनुभएका रामले त्यस क्षेत्रलाई रामपुर नाम राखी उत्तम गाउँ बनाउनुभयो। यस रापुरक्षेत्रमा नै राम सीताका साथ युग-युगसम्म रहनुहुन्छ। यस क्षेत्रमा मर्नेहरूका निमित्त भगवान् रामले सधैँ तारकमन्त्रको उपदेश गर्नुहुन्छ। यो रहस्य बुझेर तारकमन्त्रको जप गरी मानिसहरू पवित्र रामपुरमा रहनुपर्छ। साथै मन्त्र र तन्त्र (तन्त्रशास्त्र) द्वारा वर्णन गरिएका सारा कर्महरू पनि सम्पन्न गर्नुपर्छ ॥१८-२०॥

कल्पको आदिमा, युगको आदिमा, मन्वन्तरको आदिमा, पूर्णिमापछिका अष्टका (सप्तमी, अष्टमी, नवमीका) दिनहरूमा, एकोद्दिष्ट श्राद्धको दिनमा, महालय श्राद्धको दिनमा, सङ्क्रान्ति र ग्रहणका दिनमा, कार्तिक, वैशाख, माघ र मंसिरका महिनामा पितृकार्य र देवकार्य गरेर नित्य रामपुरमा बस्ने मानिस विष्णुको परमधाम उत्तमपदमा पुग्दछ। शिवभक्त पनि आत्मशुद्ध भै पवित्र शिवपुरमा प्राप्त हुन्छ ॥२१-२३॥

जुन मानिसले यस रामपुरक्षेत्रमा विधिपूर्वक पर्वमा पार्वणश्राद्ध गर्छ, त्यस पुरुषका १०१ कुल विष्णुको धाम वैकुण्ठमा प्राप्त हुन्छन्। यस रामपुरक्षेत्रमा जुन मानिसले सङ्क्रान्तिका दिन देवकार्य र पितृकार्य गर्छ, त्यो मानिस निश्चय नै आफ्ना १०० कुलका साथ सधैँ वैकुण्ठलोकमा वास गर्छ। जुन मानिसले यस रामपुरक्षेत्रमा ग्रहणका समयमा शुभ कर्म गर्छ, त्यो मानिस सूर्यमण्डल भेदन गरेर सम्पूर्ण आफ्नो कुलका मानिसका साथ परमपद (विष्णुलोक)मा पुग्छ। यस रामपुरक्षेत्रमा कार्तिकमा शुभकार्य गर्ने (मानिस) करोडौँ जन्मसम्म आर्जन गरेको सबै पापबाट मुक्त भई कल्पसम्म ब्रह्मलोकमा बसेर मुक्तिपद प्राप्त गर्छ ॥२४-२७॥

वैशाख महिनामा रामपुर क्षेत्रमा बसेर विष्णुको व्रत गर्ने मानिस करोडौँ कल्पसम्म वैकुण्ठलोकमा बसेर सायुज्य मुक्ति प्राप्त गर्छ। जुन मानिसले माघमा रामपुरमा बसेर स्नान दान आदि कर्म गर्छ, त्यो मानिस दुई परार्द्धसम्म ब्रह्माको समीपमा बस्न पाउँछ। अणिमा आदि ८ प्रकारका सिद्धिहरू प्राप्त गरेर गति नरोकिने त्यो सिद्ध निश्चय नै विष्णुको धाममा पुगेर विष्णुको नै स्वरूप प्राप्त गर्छ ॥३०॥ जुन मानिसले यस रामपुरक्षेत्रमा मंसिर महिनामा सत्कर्म गर्छ, त्यसले निश्चय नै ब्रह्माण्डरूपी घरमा इच्छाअनुसारको गति(सिद्धि) प्राप्त गर्छ ॥२८-३१॥

आजन्मामरणान्तश्च स्थित्वा रामपुरे नरः। स्वकर्मनिरतो नित्यं सत्यवादी दयापरः ॥३२॥
स यत् फलमवाप्नोति ब्रवीमि तद् द्विजोत्तम ! सिद्ध्यष्टकं स संप्राप्य सर्वत्राव्याहतागतिः ॥३३॥
कोटिब्रह्माण्डगो विश्वकर्ता हर्ता च रक्षकः। कोटिविश्वदयाभावो द्रष्टा स्वच्छन्दवर्तकः ॥३४॥
पदार्थान् बाहुपद्मेषु धृत्वा सर्वत्र पूजितः। प्रसादाद् वासुदेवस्य भवत्येव न संशयः ॥३५॥
अत्रैकधेनुदानेन गोसहस्रफलं लभेत्। प्रदातुर्गोशतस्यापि कः क्षमः फलवर्णने ? ॥३६॥
तण्डुलप्रस्थदानेन फलं धान्याचलाधिकम्। अत्र धान्याचलस्यापि कः क्षमः फलवर्णने ॥३७॥
तुलापुरुषदानस्य शाकमूलफलैरिह। फलं स्याद् गण्डकीतीरे काञ्चनस्य तु का कथा ? ॥३८॥
अत्राहःपक्षमासर्तुवत्सरान्तव्रती नरः। कोटिजन्मकृतं पापं त्यक्त्वा वैकुण्ठभाग्भवेत् ॥४०॥
अत्र यः कुरुते वेश्म हरिशङ्करयोः सुधीः। तृणकाष्ठमयं वापि स लभेद् यत्फलं द्विजः ॥४१॥
तच्छृणुष्व पुराणादौ कथितं पूर्वसूरिभिः। वैकुण्ठे स्वर्णप्राकारमणिमण्डपमण्डिते ॥४२॥
विमानावलिबाहुल्ये सर्वलोकनमस्कृते। लभते मन्दिरं दिव्यं नानारत्नविचित्रितम् ॥४३॥
भानुकोटिप्रतीकाशं घण्टारवविराजितम्। सर्वसम्पत्समायुक्तं सर्वभोगसमन्वितम् ॥४४॥
अनेकशिल्पशोभाढ्यमप्सरोगणसेवितम्। पाषाणेष्टमयं यो वै मन्दिरं कुरुते तयोः ॥४५॥
गण्डकीनिकटे स स्याद् ब्रह्माण्डाधिपतिर्नरः। स्वर्णादिधातुभिर्द्रव्यैर्यः कुर्याद् भवनं तयोः ॥४६॥
प्रसादादनयोर्विप्र ! स भवेल्लोकपूजितः। यः कश्चिद् गण्डकीतीरे कुरुते कर्म भाग्यवान् ॥४७॥
नानन्तोऽस्य फलं वक्तुं समर्थो वर्षकोटिभिः। ज्ञात्वेत्थं ब्रह्मणः पुत्रा गण्डकीमहिमामृतम् ॥४८॥

---

हे ब्राह्मण ! जुन मानिस रामपुरक्षेत्रमा बसेर जन्मदेखि मृत्युसम्म सधैँ आफ्नो कर्ममा स्थिर भई सत्यवादी र दयालु हुन्छ, त्यस मानिसले जुन फल पाउँछ, त्यसबारे म भन्दछु – त्यस्तो मानिस विष्णुको कृपाले अणिमा आदि आठ सिद्धिहरू प्राप्त गरेर चारैतिर गति भएको, करोडौँ ब्रह्माण्डहरूमा पुग्न सक्ने, विश्वको सृष्टि, स्थिति र संहार गर्ने, कोटि कोटि विश्वमा करुणा गर्ने, सबैको साक्षी र स्वच्छन्द व्यवहार गर्ने हुन्छ ॥३२–३४॥

आफ्ना कमलजस्ता सुन्दर हातहरूमा ऐश्वर्य लिएर सबैलाई वितरण गर्ने र सबै ठाउँमा पूजित पनि हुन्छ, यसमा सन्देह छैन। रामपुरक्षेत्रमा एउटी गाई दान गर्दा हजार गाई दान गरेको फल प्राप्त हुन्छ। जसले यहाँ १०० गाई दान गर्दछ, त्यसको फल को वर्णन गर्न सक्छ ? यहाँ १ पाथी चामल दान गर्नाले धान्याचल दान गरेभन्दा बढी फल हुन्छ, यहाँ धान्याचाल दान गरेको फल वर्णन गर्न को समर्थ छ ? यस रामपुरक्षेत्रमा गण्डकीको तीरमा साग, कन्दमूल र फलहरूको दान गर्नाले पनि तुलापुरुषदानको फल प्राप्त हुन्छ भने सुवर्णदान गरेको फल बताएरै सकिँदैन। यस रामपुरक्षेत्रमा दिन, पक्ष, महिना, ऋतु, र वर्षपर्यन्त व्रत गरेर बस्ने मानिस करोडौँ जन्ममा गरेको पापबाट मुक्त भई वैकुण्ठलोकमा बस्ने हुन्छ ॥३५–४०॥

हे ब्राह्मण ! यस रामपुरक्षेत्रमा जुन विद्वान्ले घाँस र काठको मात्र पनि विष्णु र शिवको मन्दिर बनाउँछ, त्यस व्यक्तिले पाउने फलका सम्बन्धमा पुराना विद्वान्हरूले पुराण आदिमा गरेको वर्णन सुन्नुहोस्। शिव वा विष्णुको मन्दिर बनाउने पुरुषले सुनका पर्खाल र मणिहरूका चौकीहरूले सुहाउने, थुप्रै विमानहरू भएको र सबै लोकले प्रणाम गरिने वैकुण्ठलोकमा अनेकथरी रत्नहरूले चित्रविचित्र देखिने, करोडौँ सूर्य झैँ प्रकाशमान, घण्टहरू बजिरहेको, समग्र ऐश्वर्यहरू भएको, सबै प्रकारका सुख प्रदान गर्ने, अनेकौँ कलाकृतिहरूले गर्दा सुन्दर र अनेकौँ अप्सराहरूले सेवा गरिएको सुन्दर भवन प्राप्त गर्छ। जो मानिस गण्डकी नदीको नजिकमा ढुङ्गा र ईँटहरूले विष्णु र शिवको मन्दिर बनउँछ, त्यो मानिस ब्रह्माण्डको अधिपति हुन्छ। जुन मानिसले सुन आदि धातुका पदार्थद्वारा विष्णु र शिवको मन्दिर बनाउँछ, त्यो मानिस दुबै देवताहरूको कृपाद्वारा लोकपूजित हुन्छ। जुन भाग्यमानी पुरुषले गण्डकीको तीरमा कर्म गर्छ, यसको फल वर्णन गर्न शेषनागहरू पनि करोडौँ वर्षसम्म समर्थ हुँदैनन् ॥४१–४८॥

शालग्रामार्चनं कृत्वा बभूवुः सिद्धरूपिणः । चक्रुर्नानाविधां सृष्टिं शालग्रामप्रभावतः ॥४९॥
ततापं मुक्तिक्षेत्रेऽथ काकवेण्यां कुमारकः । गण्डकीयमुनावेण्यां तेपतुः शङ्कराच्युतौ ॥५०॥
तेपू रुद्रा रुद्रवेण्यां पुलहो पुलहाश्रमे । पुलस्त्यवेणिकायान्तु पुलस्त्योऽपि ततापं च ॥५१॥
तेपाते गण्डकीवेण्यां मुनी नारदकर्दमौ । चक्रतीर्थे मरीचिश्च ततापं क्रतुरङ्गिराः ॥५२॥
अत्रिः सोमेशशिखरे भृगुश्च भृगुतुङ्गके मनू रेवातटे रम्ये ततापं परमं तपः ॥५३॥
तथा रामपुरे भानुकुलाचार्यो वशिष्ठकः । गण्डकीतटमाश्रित्य ततापं सृष्टिसाधकः ॥५४॥
देवदानवगन्धर्वपितरो भुवनाधिपाः । तपन्ति गण्डकीतीरे कल्पे कल्पे युगे युगे ॥५५॥
शालग्रामविहीनञ्च धिग्देशं नरकाधमम् । न तत्पुराणकं ज्ञेयं शालग्रामस्तुतिं विना ॥५६॥
न तीर्थं तीर्थतां याति शालग्रामशिलां विना । हव्यं कव्यं च सम्पूर्णां कलां नार्हति तद्विना ॥५७॥
देवघट्टे पञ्चनदे मुक्तिक्षेत्रे विशेषतः । गण्डकी दुर्लभा नृणां त्रिषु स्थानविशेषतः ॥५८॥
त्रिवेण्यां मरणं चेष्टं देवघट्टे मखादिकम् । दानं देवालयं रामपुरे च वृक्षवाटिकाम् ॥५९॥
मुक्तिक्षेत्रे प्रशंसन्ति जपादियोगसाधनम् । श्राद्धञ्च मोदिकावेण्यां रुद्रवेण्यांञ्च शान्तिकम् ॥६०॥
श्रेष्ठं हरिहरक्षेत्रे पौष्टिकञ्चाभिचारकम् । मायावेण्यां द्विजश्रेष्ठ ! कथितञ्चादिसूरिभिः ॥६१॥

इति कश्यपकुलतिलककाश्यप रणोपासककश्यपगोत्रीयश्रीकाशीरामविरचिते गण्डकीमाहात्म्ये रामपुरक्षेत्रवर्णनं नाम चतुर्थोऽध्यायः ॥

---

यसरी ब्रह्माका छोराहरू कश्यप आदि महर्षिले गण्डकीको महिमामृत पान गरेर र शालग्रामको पूजा गरेर सिद्धरूप प्राप्त गरी शालग्रामको प्रभावले नाना प्रकारको सृष्टि पनि गरे । कुमारले मुक्तिक्षेत्रको कागवेनीमा तपस्या गरे भने शङ्कर र विष्णुले गण्डकी र यमुनाको दोभानमा तपस्या गर्नुभयो । ११ रुद्रहरूले रुद्रवेणी र कालीको दोभानमा तपस्या गर्नुभयो । पुलहऋषिले पुलहाश्रम- स्याग्दीको लेकमा र पुलस्त्य ऋषिले पुलस्त्यदोभानमा तपस्या गरे । गण्डकीको सङ्गममा नारद र कर्दम मुनिले तपस्या गरे, चक्रतीर्थमा मरीचि, ऋतु र अङ्गिराले तपस्या गरे ॥४९-५२॥

सोमकूटपर्वतमा अत्रिले, भृगुतुङ्गपर्वतमा भृगुले र नर्मदा नदीको सुन्दर तीरमा मनुराजाले परम तप गरेका थिए । त्यसरी नै रामपुरमा सूर्यवंशका गुरु वशिष्ठऋषिले तपस्या गरे भने गण्डकीको तीरमा बसी ब्रह्माले तपस्या गरे । देवता, दानव, गन्धर्व, पितृहरू र लोकपालहरू कल्प-कल्पमा र युग-युगमा गण्डकीतीरमा तपस्या गर्छन् । शालग्राम नभएको नरकभन्दा तुच्छदेशलाई धिक्कार छ र शालग्रामको स्तुति नभएको पुराणलाई पुराण मान्न हुँदैन ॥५३-५६॥

शालग्रामशिला विना तीर्थलाई तीर्थ मानिदैँन, तीर्थ पनि शालग्राम विना हवन गरिने पदार्थ र तर्पण दिइने पदार्थहरूमा पूर्णता प्राप्त गर्दैन । स्थानविशेषले गर्दा विशेष गरेर देवघाट, पञ्चनद र मुक्तिक्षेत्र तीनै ठाउँमा मनुष्यहरूका निमित्त गण्डकी दुर्लभ हुन्छिन् ॥५७-५८॥

त्रिवेणीमा मरण र देवघाटमा यज्ञ, दान र मन्दिरनिर्माण आदि उचित मानिन्छ । रामपुरक्षेत्रमा रुख र बगैंचा लगाउनुको विद्वान्हरू प्रशंसा गर्छन् भने मुक्तिक्षेत्रमा जप आदि योग साधनालाई प्रशंसा गर्छन् । मोदीवेनीमा श्राद्ध र रुद्रवेणीमा शान्तिकर्म गर्नुको प्रशंसा गर्छन् । हे ब्राह्मणहरूमा श्रेष्ठ भगवत् शर्मा ! पुराना विद्वान्हरूद्वारा हरिहरक्षेत्र (देवघाट) मा पौष्टिककर्म र मायावेणीमा अभिचारकर्म शत्रुमारण आदिको प्रशंसा गरिएको छ ॥५९-६१॥

यसप्रकार कश्यपकुलका श्रेष्ठ काश्यपको चरणको उपासना गर्ने कश्यपगोत्रीय श्री काशीरामद्वारा रचित गण्डकीमाहात्म्यमा रामपुरक्षेत्रवर्णन नाम गरेको चौथो अध्याय समाप्त भयो ॥

# पाँचौं अध्याय : पारकोटदेशका तीर्थहरूको वर्णन

श्रीकाशीराम उवाच

अथ प्रसङ्गाद् गण्डक्या वर्णयामि द्विजोत्तम ! । पारकोटं कलौ यत्र प्रवसन्ति धराधिपाः ॥१॥
सोमसूर्यकुले जाता गोब्राह्मणसुरार्चकाः । यत्र तिष्ठन्ति भूदेवा वैष्णवा वेदधर्मिणः ॥२॥
पञ्चगौडास्तथा पञ्चद्राविडाश्चान्यदेशजाः । दयावन्तो दानशीला वेदवेदाङ्गपारगाः ॥३॥
अथ विष्णोर्नाभिपद्माद् बभूवाजश्चतुर्मुखः । अत्रिस्तस्यात्मजो विप्र ! सोमस्य जनको मुनिः ॥४॥
सोमवंशोद्भवो राजा सुचिराश्वो महाबलः । सुचिराश्वसुतः पारस्तत्पुत्रो नीप एव च ॥५॥
पारः परपुरध्वंसी हिमशैले समागतः । हत्वा म्लेच्छान् विकर्मस्थान् चकार देशमुत्तमम् ॥६॥
अन्तराले महानद्योर्गण्डकीशूलगण्डयोः । पारकोटाभिधस्तस्माद्देशः सर्वत्र विश्रुतः ॥७॥
सप्त धाराः प्रशंसन्ति गण्डकीतुल्यपुण्यदाः । मोदिका शुक्लिका माद्री मेदगङ्गा च कर्मदा ॥८॥
तत्रैव धर्मदा प्रोक्ता तत्र गन्धवहा शुभा । प्रातः प्रातश्च यः स्नायात्तासु सूर्यदिनक्रमात् ॥९॥
संप्राप्य मोदिवेण्यान्तु धेनुं दद्याद् द्विजातये । सप्तमे शनिवारे च स लभेद् वाञ्छितं फलम् ॥१०॥
अपुत्रो लभते पुत्रं निर्धनो धनमाप्नुयात् । स्त्रियं विद्याञ्च नैरुज्यस्वर्गमोक्षान्न संशयः ॥११॥
निमज्जेन्मार्गशीर्षे यो नित्यं गन्धवहाम्भसि । स वसेद् वायुलोके च युगसाहस्रकं नरः ॥१२॥
पौषे च धर्मदानद्यां यः स्नायान्नीतिशास्त्रवित् । स वसेद् धर्मराजस्य लोके कल्पं शुभात्मकः ॥१३॥

---

काशीराम भन्दछन् – हे श्रेष्ठ ब्राह्मण ! गण्डकीको प्रसङ्गअनुसार अहिले म पारकोटक्षेत्रको वर्णन गर्दछु, जहाँ कलियुगमा राजाहरू बस्दछन् । पारकोटक्षेत्रमा सूर्य र चन्द्रवंशमा पैदा भएका, गाई, ब्राह्मण र देवताको पूजा गर्ने राजाहरू बस्दछन् । त्यसैगरी वैष्णव, वैदिक, पञ्चगौड प्रदेशबाट पञ्चद्रविड (प्रदेश)बाट र अरू देशहरूबाट आएका दयालु, दानी, वेद र वेदाङ्गमा पारङ्गत भएका विद्वान्हरूवास गर्दछन् ॥१–३॥

हे ब्राह्मण ! सर्वप्रथम विष्णुको नाभिकमलबाट ४ मुख भएका ब्रह्माजी पैदा हुनुभयो । ब्रह्माजीबाट चन्द्रमाका पिता अत्रि ऋषि पैदा भएका हुन् । त्यही चन्द्रवंशमा रुचिराश्व नामका धेरै बलिया राजा भए । रुचिराश्वबाट पार भए र पारका छोरा नीप भए । अरूका राजधानी विध्वंस गर्ने ती पार नामका राजाले हिमालय पर्वतमा आएर विधर्मीहरूलाई मारेर एउटा राम्रो देश बनाए । काली र त्रिशूली नामका दुईवटा ठूला नदीहरूको माझमा पर्ने पारकोट नामको देश पार नामका राजाको पुरुषार्थले गर्दा चारैतिर प्रसिद्ध भयो ॥४–७॥

विद्वान् यसै क्षेत्रमा गण्डकी जस्तै पवित्र मोदी – वेनी सेती मादी, मिदिम, मर्स्याङ्दी, दरौंदी र आँकू नामका पवित्र ७ धाराहरूको प्रशंसा गर्छन् । जो मानिस बिहान बिहान आइतबारदेखि क्रमैले यी ७ नदीहरूमा नुहाउँछ र सातौं शनिवारका दिन मोदीवेनीमा पुगेर ब्राह्मणहरूलाई गाईदान पनि गर्छ त्यो मानिस अभीष्ट फल प्राप्त गर्न समर्थ हुन्छ ॥८–१०॥

यसप्रकार स्नान गर्नेहरूमा अपुताले छोरो पाउँछ, निर्धनले धन, स्त्री, विद्या, स्वास्थ्य स्वर्ग र मोक्ष पाउँछ भन्ने कुरामा शङ्का छैन । जो मानिस मंसिर महिनामा नित्य आँकू को जलमा डुबुल्की लगाउँछ, त्यो व्यक्ति हजार युगसम्म वायुलोकमा वास गर्दछ । धर्मशास्त्रको ज्ञाता जो मानिसले पुस महिनामा दरौंदी नदीमा स्नान गर्दछ, त्यो व्यक्ति मङ्गलरूप बनेर कल्प समयसम्म धर्मराजको लोकमा बस्छ ॥११–१३॥

माघे च कर्मदातोये यः स्नायात् साधुकर्मकृत्। स वसेत्कल्पपर्यन्तमिन्द्रलोके द्विजोत्तम ! ॥१४॥
यः स्नायात् फाल्गुने मेदगङ्गायां शङ्करार्चकः। स वसेच्छिवलोके वै कोटिकल्पं न संशयः ॥१५॥
चैत्रमासे च यः स्नायात् माद्रिकायां द्विजोत्तम !। स वसेन्नागलोके च नित्यं शेषार्चको नरः ॥१६॥
वैशाखे शुक्लगण्डक्यां यः स्नायाद् प्रयतो नरः। गोलोके स वसेद् कल्पं मासं पूर्णं गवार्चकः ॥
मोदिकायाञ्च यः स्नायाज्ज्येष्ठे लम्बोदरार्चकः। स वसेद् गणनाथस्य लोके कल्पं सुपूजितः ॥१८॥
शुच्यादिकार्तिकान्ते च यः स्नायाद् गण्डकीजले। वैकुण्ठे स वसेन्नित्यं पुरुषः पुरुषार्चकः ॥१९॥
तीर्थानि बहुशः सन्ति पारकोटे द्विजोत्तम !। वर्णितं मुनिभिः सम्यक् पुराणेषु सहस्रशः ॥२०॥
कानिचित् सन्ति व्यक्तानि सन्ति गुप्तानि कानिचित्। नानावेदेषु शास्त्रेषु नास्त्यन्तो तीर्थवर्णने ॥२१॥
तीर्थं वै शुक्लगण्डक्याः पश्चिमे गिरिगर्तके। सप्तपातालमूलाच्च सूक्ष्मरन्ध्रं विनिर्गतम् ॥२२॥
आदौ वाराहकल्पे च वराहोऽजेन प्रार्थितः। गतो ब्रह्माण्डपिण्डाधो महागम्भीरशम्बरे ॥२३॥
धृत्वा धरां दन्तकोटौ यावदुद्धर्तुमुन्मुखः। तावद्ददर्श भगवानादिदैत्यं गदोद्यतम् ॥२४॥
तं हत्वा भगवान् यज्ञवराहो धरणीधरः। उत्पपात जलादुर्ध्वं स्थापयामास वै धराम् ॥२५॥
भित्त्वा च सप्तपातालं सूक्ष्मरूपेण शूकरः। निर्गतः पृथिवीपृष्ठे ब्रह्मर्षिमनुभिः स्तुतः ॥२६॥
गण्डक्योरन्तरे पारकोटे च गिरिगर्तकम्। कदाचिद् बुद्बुदाकारैस्तरङ्गैर्वहति ध्रुवम् ॥२७॥
दुर्लभं त्रिषु लोकेषु कदा वा छिन्नधारया। दैवे कर्मणि पित्र्ये च तत्तीर्थं सिद्धदं परम् ॥२८॥
यः स्नायात् पञ्चगव्याशी सप्तवारेषु नित्यशः। सप्तसप्ततरङ्गेषु मुच्यते सर्वपातकैः ॥२९॥
सप्तद्वीपाटनं कृत्वा सप्ताब्धिस्नानजं फलम्। लब्ध्वा वैकुण्ठमाप्नोति सप्तभिः स्वकुलैः सह ॥३०॥

---

हे उत्तम ब्राह्मण ! असल कर्म गर्ने जुन मानिस माघ महिनामा मर्स्याङ्दीको जलमा स्नान गर्दछ, त्यो कल्पपर्यन्त इन्द्रलोकमा वास गर्दछ। जुन मानिस फागुनमा मिदिमनदीमा स्नान गरी शङ्करको पूजा गर्छ, त्यो मानिस करोडौं कल्पसम्म शिवलोकमा वास गर्दछ। यस कुरामा कुनै सन्देह छैन। हे उत्तमब्राह्मण ! जुन मानिसले चैतमा मादीमा नुहाउँछ र सधैं शेष भगवान्‌को पूजा गर्दछ, त्यो मानिस नागलोकमा वास गर्दछ। जुन मानिसले वैशाखमा सेती गण्डकीमा स्नान गर्दछ र प्रयत्नपूर्वक एक महिनासम्म गाईको पूजा गर्छ, त्यो मानिस एक कल्पपर्यन्त गोलोकमा बस्छ। जुन मानिसले जेठ महिनामा मोदीवेनीमा नुहाउँछ र गणेशको पूजा गर्छ, त्यो मानिस त्यहाँ सबैको सम्मानपात्र बनेर एक कल्पसम्म गणेशको लोकमा बस्दछ। जुन मानिसले जेठदेखि कार्तिकसम्म गण्डकीको जलमा नुहाउँछ र परमपुरुष विष्णुको पूजा गर्छ, त्यो पुरुष नित्य वैकुण्ठलोकमा बस्छ ॥१४-१९॥

हे ब्राह्मण ! पारकोट क्षेत्रमा धेरै तीर्थहरू छन्, मुनिहरूले पुराणहरूमा राम्रा प्रकारले त्यस्ता हजारौं तीर्थहरूको वर्णन गरेका छन्। कुनै तीर्थहरू यसरी प्रकट छन् भने कुनै तीर्थ अप्रकट पनि छन्। नाना वेद र शास्त्रहरूमा तीर्थहरूको वर्णनको अन्त्य छैन। सेतीगण्डकीको पश्चिमतर्फ पर्वतको खाल्टेमा ७ पातालहरूको सतहदेखि निस्केको एउटा सानो प्वाल छ र त्यो पनि तीर्थ हो। यस प्वालबाट पहिलो वाराहकल्पमा ब्रह्माद्वारा पृथिवीको उद्धार गर्न प्रार्थना गरिएका भगवान् वराह ब्रह्माण्डको गोलोभन्दा तल ज्यादै गहिरो पानीमा डुब्नुभएको थियो ॥२०-२३॥

आफ्ना दाह्राको टुप्पोमा पृथिवीलाई थामेर माथि उचाल्नका लागि तयार हुनुभएका भगवान्‌ले त्यतिखेर नै गदा उचालेर आफैंलाई मार्न तयार भएको दैत्यराज हिरण्याक्षलाई देख्नुभयो। पृथिवीधारण गर्ने यज्ञरूपी भगवान् वराहले हिरण्याक्षलाई मारेर उफ्रनुभयो र पानीबाट निकालिएकी पृथिवीलाई पानीभन्दा माथि राख्नुभयो। ७ पातालहरू फोरेर सानो रूप गरी पृथिवीमाथि निस्किनुभएका भगवान् वराहको ब्रह्मर्षिहरूले मन्त्रले स्तुति गरे ॥२४-२६॥

गण्डकीहरूको माझमा पारकोट क्षेत्रमा एउटा पहाडी खाल्टे भुलभुल गर्ने तरंगहरूका साथ नै बगेजस्तो लाग्छ। कहिलेकाहीं पातलो धाराका साथ बग्ने तीनै लोकमा दुर्लभ त्यो उत्तमतीर्थ देवता र पितृहरूका कार्यमा सिद्धिदायक मानिएको छ। जुन मानिसले निरन्तर गोमूत्र, गोबर, दूध, दही, घ्यू, र कुशजल खाएर सातै वारमा क्रमैले सप्तगण्डकीमा नुहाउँछ,त्यो सबै पापबाट मुक्त हुन्छ। ७ द्वीपहरूमाभ्रमण गरी सात समुद्रहरूमा नुहाएको फल प्राप्त गर्ने त्यो मानिस ७ कुलहरूका साथ वैकुण्ठलोकमा प्राप्त हुन्छ ॥२७-३०॥

पारकोटेऽन्यतीर्थञ्च मेदवेणीति संज्ञकम्। तत्क्षेत्रे शिवलिङ्गञ्च वर्तति शिवदं नृणाम् ॥३१॥
माघे च शिवरात्रौ च स्नापयित्वा व्रती नरः। वृषोत्सर्गविधानेन वत्सिकाभिश्चतसृभिः ॥३२॥
प्रस्थप्रस्थप्रमाणेन पञ्चामृतकधारया। स्नापयेच्छिवलिङ्गञ्च वेदमन्त्रैः पृथक् पृथक् ॥३३॥
तथा पञ्चोपचारैश्च पूजयेद् विधिवत् सुधीः। शतरुद्रिकयैवेशमच्छिन्नजलधारया ॥३४॥
अखण्डविल्वपत्रैश्च सहस्रैरर्चयेद् व्रती। उपचारैः षोडशभिः प्रहरे प्रहरे व्रती ॥३५॥
कुर्याद् होमं जपं नृत्यं मृगीशिवकथां तथा। रात्रौ जागरणं कुर्यात् प्रातरुत्थाय स व्रती ॥३६॥
समाप्य नित्यकर्माणि ब्राह्मणं शिवपूजकम्। सम्पूज्य दक्षिणां दद्याद्धेनुञ्च शिवप्रीतये ॥३७॥
एवं यः कुरुते तत्र स लभेद् वाञ्छितं फलम्। धमार्थकाममोक्षाँश्च लभते नरः ॥३८॥
ब्राह्मणो लभते विद्यां नृपो राज्यं धनं वणिक्। योगीन्द्रो याति मोक्षञ्च नारी सौभाग्यमाप्नुयात् ॥३९॥
अन्यत्तीर्थं प्रवक्ष्यामि पारकोटे द्विजोत्तम !। तत्रापि यत्र ब्रह्मर्षिश्च्यवनो विपुलं तपः ॥४०॥
तन्नाम्ना च्यवनानाम्नी नद्यस्ति हिमसंश्रया। कर्मदाच्च्यवनायोगे क्षेत्रं च्यवनघट्टकम् ॥४१॥
तत्र स्नात्वा भवेद् वक्ता धनाढ्यः कीर्तिमान् नरः। माघमासे विशेषेण भुक्तिञ्च मुक्तिमाप्नुयात् ॥४२॥
नगो मत्स्यगिरिर्नाम हिमवान् मत्स्यशृंगकः। तस्य शीर्षे स्थितौ देवौ नरनारायणाभिधौ ॥४३॥
शुक्लकृष्णौ च तौ देवौ तयोर्गण्डस्थलाज्जलम्। निःसृतं कृष्णरूपस्य कृष्णा पश्चिमवाहिनी ॥४४॥
शुक्ला शुक्लतनुद्वारा नदी सा पूर्ववाहिनी। अपरा मिश्रिता धारा जाता चोत्तरवाहिनी ॥४५॥
कर्मदा सैव संप्रोक्ता तथा च वृद्धगण्डकी। कृष्णा शुक्ला च वृद्धा च गण्डक्यस्तिस्र एव च ॥४६॥
दैवे पित्र्ये व्रतादौ च सर्वाः सिद्धिप्रदाः स्मृताः। आसां भेदो न कर्तव्यस्तिस्रस्तुल्यफलप्रदाः ॥४७॥

---

पारकोटक्षेत्रमा अर्को तीर्थ मेदवेनीनामक करापुट्यर नामको क्षेत्र छ,त्यहाँ मानिसहरूको कल्याण गर्ने भगवान् ईशानेश्वर शिवलिङ्गकारूपमा विराजमान हुनुहुन्छ। माघ महिनामा शिवरात्रि व्रत गर्ने मानिसले ४ वटी बाच्छीहरूका साथ वृषोत्सर्ग (साँढे छोड्ने) विधिले पाथीपाथीजति पञ्चामृतको धारा बगाएर अलग अलग वेदका मन्त्रहरूले ईशानेश्वर शिवलिङ्गलाई नुहाइदिनु पर्दछ। त्यसरी व्रत गर्ने बुद्धिमान् मानिसले पञ्चोपचारले विधिपूर्वक पूजा गरी अटुट जलधाराका साथ शतरुद्रीको पाठ लगाएर हजार बेलपत्र र प्रहर प्रहरमा षोडशोपचारले पनि पूजा गर्नुपर्दछ ॥३१–३५॥

व्रत गर्ने मानिसले शतरुद्री पाठ गराएपछि होम, जप, नाच र मृगको रूपधारण गर्ने शिव र पार्वतीका कथा पनि सुन्नुपर्छ। व्रत गर्ने मानिसले रातमा जागरणसमेत गरी बिहान उठेर नित्यकर्म सम्पन्न गरेपछि शिवको पूजा गर्ने ब्राह्मणलाई पुजेर शिवको प्रीतिका लागि दक्षिणा र गाईदान गर्नुपर्दछ। जुन मानिसले त्यस मेदवेनीतीर्थमा यसप्रकार कर्म गर्छ, त्यो मानिस धर्म, अर्थ, काम, मोक्ष र इच्छा गरेको फल प्राप्त गर्छ ॥३६–३८॥

ब्राह्मणले विद्या पाउँछ, राजाले राज्य र वैश्यले धन (पाउँछ)। योगीले मुक्ति पाउँछ र नारीले सौभाग्य प्राप्त गर्छिन्। हे उत्तमब्राह्मण ! म पारकोटक्षेत्रको त्यो अर्को तीर्थको वर्णन गर्दछु, जहाँ ब्रह्मर्षि च्यवनले ठूलो तपस्या गरेका थिए। हिमालयबाट झरेकी च्यवना(चेपे) नदी छन् र कर्मदा(मर्स्याङ्दी) र च्यवनानदीको दोभानमा च्यवनघट्टक (चेपेघाट) नाम गरेको क्षेत्र छ ॥३९–४१॥

चेपेघाटमा स्नान गर्ने मानिस प्रवाचक, धनी र कीर्तिशाली पनि हुन्छ। विशेष गरेर माघ महिनामा स्नान गर्ने मानिसले भुक्ति र मुक्ति दुबै पाउँछ। माछाको पुच्छरजस्तो आकारको टाकुरा भएको माछापुच्छ्रे नाम गरेको हिमालयपर्वत छ, त्यस पर्वतको शिरमा भगवान् नर र नारायण बस्नुभएको थियो। नर र नारायण ऋषिहरूमा नर सेता र नारायण काला हुनुहुन्थ्यो र उहाँहरूको गालाबाट जल निस्क्यो। नारायणको कालो रूपबाट कालीगण्डकी पश्चिमवाहिनी र नरका सेतो शरीरबाट सेतीगण्डकी पूर्ववाहिनी भइन्। अर्की उत्तरवाहिनी मर्स्याङ्दी नामले प्रसिद्ध भइन्। त्यस्तै बूढीगण्डकीसमेत काली, सेती, र बूढी गरी तीन गण्डकीहरू प्रसिद्ध छन्। देवकार्य पितृकार्य र व्रत आदिमा सबै गण्डकी सिद्धि दिने मानिएको छन्। यी तीनवटी गण्डकीहरूमा भेद गर्नु ठीक छैन, सबै नै समानफल दिने छन् ॥४२–४७॥

यश्च काले त्यजेत् प्राणान् मर्त्यो ह्यन्ते द्विजोत्तम ! । तीर्थे च्यवनघट्टे च स मुक्तो नात्र संशयः ॥४८॥
यदा क्षीरं वहत्येषा च्यवना दैवयोगतः । तदा यत्नेन कर्तव्या हव्यकव्यादिकाः क्रियाः ॥४९॥
फलं स्यादक्षय्यं तत्र मुक्तो भवति पातकात् । उपद्रवा विनश्यन्ति ग्रहपीडास्तथैव च ॥५०॥
तस्य चोत्तरदिग्भागे हिमवत्सानुमस्तके । वराहपुष्करं नाम भुक्तिमुक्तिप्रदं नृणाम् ॥५१॥
वराहपुष्करे यो वै कुर्यात् स्नानादिकं नरः । स लभेद् वाञ्छितार्थञ्च विष्णुलोकं च गच्छति ॥५२॥
वैशाखे पूर्णिमायाञ्च यः स्नायाद् विधिवन्नरः । यवाशी धेनुदानी च वैकुण्ठं याति सर्वदा ॥५३॥
पारकोटेऽन्यतीर्थञ्च वर्तते पुण्यदायकम् । माद्रिकाशुक्लगण्डक्योः सङ्गमे शङ्कराभिधम् ॥५४॥
तपश्चकार तत्रैव पराशरमहामुनिः । पराशरगुहा तत्र तपःसिद्धिप्रदायिनी ॥५५॥
जज्ञे मत्स्योदरीपुत्रस्तत्र द्वीपे पराशरात् । पुराणसंहिताकर्ता वेदशास्त्रप्रवर्तकः ॥५६॥
तत्र स्नात्वा सुधीर्मर्त्यः करोति कर्म तत्परः। दैविकं पैतृकञ्चैव स गच्छेद् परमंपदम् ॥५७॥
सम्पूज्य ब्राह्मणं तत्र वेदवेदाङ्गपारगम् । तस्मै ददाति विप्राय धेनुं यः स कविर्भवेत् ॥५८॥
क्षेत्रेऽस्मिन् श्राद्धकर्ता च पार्वणादिषु पर्वसु । स नयेत् पितृवर्गञ्च वैकुण्ठे नात्र संशयः ॥५९॥
तत्क्षेत्रात् पूर्वभागे च कुण्डं मत्स्योदरीकृतम् । तत्र स्नानोपवासञ्च कृत्वा चावश्यकं नरः ॥६०॥
मीनां संपूज्य तत्रस्थां सर्वपापैः प्रमुच्यते । मीनापराधकोटिभ्यः स मुक्तो नात्र संशयः ॥६१॥
पारस्य तनयो नीपः शिवभक्तो महामतिः । समाराध्य शिवं तत्र नैपालस्तेन निर्मितः ॥६२॥

इति श्रीकश्यपकुलतिलककाश्यपचरणोपासककश्यपगोत्रीयश्रीकाशीरामविरचिते श्रीगण्डकीमाहात्म्ये वाराहपुराणोक्तपारकोटदेशस्थतीर्थवर्णनं नाम पञ्चमोऽध्यायः ।

---

हे उत्तम ब्राह्मण ! जुन मानिसले अन्तिम समयमा च्यवनघाटतीर्थमा प्राणत्याग गर्दछ त्यो मुक्त हुन्छ । यस कुरामा संशय छैन । दैवसंयोगले जुन समयमा च्यवनानदीले दूध बगाउँछिन् त्यतिखेर प्रयत्नपूर्वक हवन र तर्पण आदि कामहरू गर्नुपर्छ । त्यस समयमा अक्षयफल हुनेछ, सत्कर्म गर्ने मानिस पापबाट मुक्त हुनेछ र उपद्रव एवं पीडाहरू नाश हुनेछन् । च्यवनानदीदेखि उत्तर दिशातर्फ हिमालयपर्वतको टुप्पोमा मानिसहरूलाई भोग र मोक्ष दुवै दिने वराहपोखरी नामक तीर्थस्थल रहेको छ । जुन मानिसले वराहपोखरीमा स्नान आदि पुण्यकर्म गर्छ त्यो मानिस मनोरथ पूर्ण गर्छ र विष्णुलोकमा प्राप्त हुन्छ । जुन मानिसले वैशाखपूर्णिमाका दिन विधिपूर्वक वराहपोखरीमा स्नान गरी यवान्न भोजन गरी गोदान गर्नेछ, त्यस मानिसले सधैँ वैकुण्ठमा बस्न पाउनेछ ॥४८-५३॥

पारकोटक्षेत्रमा मादी र सेतीको दोभान दमौलीमा शङ्करतीर्थ नामक अर्को पुण्यप्रदायक स्थान रहेको छ । यसै शङ्कर तीर्थमा पराशर ऋषिले तपस्या गरेका थिए । त्यहाँ पराशरले तपस्या गरेको तपस्यामा सिद्धि दिने पराशरगुफा रहेको छ । त्यसै द्वीपमा पराशर ऋषिबाट मत्स्योदरीका छोराका रूपमा वेदशास्त्रका प्रवर्तक र पुराणसंहिताको रचना गर्ने वेदव्यास पैदा भएका थिए । जुन विद्वान् मानिसले त्यहाँ नुहाएर कर्ममा तत्पर भई देवकार्य र पितृकार्य गर्छ, त्यस मानिसले परमपद प्राप्त गर्छ । त्यस ठाउँमा जुन मानिस वेद, वेदाङ्गमा पारङ्गत भएका ब्राह्मणलाई पुजेर गाईदान गर्छ, त्यो अवश्य नै कवि हुन्छ । यस तीर्थमा पूर्णिमा आदि पर्वहरूमा श्राद्ध गर्ने मानिसले आफ्ना सबै पितृहरूलाई वैकुण्ठलोकमा प्राप्त गराउँछ भन्ने कुरामा कुनै सन्देह छैन ॥५४-५९॥

त्यस क्षेत्रभन्दा पूर्वतर्फ मत्स्योदरीले बनाएको कुण्ड छ । जुन मानिसले त्यहाँ आवश्यक स्नान र उपवास गरेर भगवती मीनाको पूजा गर्छ, त्यो सबै पापबाट मुक्त हुन्छ र माछा मारेका करोडौँ अपराधहरूबाट पनि मुक्त हुन्छ भन्ने कुरामा शङ्का छैन । शिवभक्त र बुद्धिमान् पारका छोरा नीपले यसै तीर्थमा शिवको आराधना गरेर नेपालको निर्माण गरेका थिए ॥६०-६२॥

यसरी कश्यपकुलका उत्तम पुरुष श्रीकाशीरामले रचना गरेको गण्डकीमाहात्म्यमा वराहपुराणले बताएको पारकोटक्षेत्रमा रहेका तीर्थहरूको वर्णनसम्बन्धी पाँचौं अध्याय पूर्ण भयो ।

# छैठौं अध्याय : गोनिष्क्रमणतीर्थवर्णन

धरोवाच

हृषीकेशस्य महिमा यत्त्वया चोपवर्णितः। अन्यच्च यत् परं गुह्यं क्षेत्रं परमपावनम् ॥१॥
वक्तुमर्हसि देवेश ! परं कौतूहलं मम। यत्र स्नानादिकं कृत्वा नरा यान्ति परां गतिम् ॥२॥

वराह उवाच

शृणु भूमे ! प्रवक्ष्यामि लोकानां हितकाम्यया। गुह्यमस्त्यपरं क्षेत्रं भुक्तिमुक्तिप्रदं नृणाम् ॥३॥
हिमाद्रावस्ति तत्क्षेत्रं यद् गोनिष्क्रमणाभिधम्। मया रुद्रस्य शान्त्यर्थं यत्र गावोऽवतारिताः ॥४॥
तपश्चकार यत्रौर्वः सर्ववाञ्छाविवर्जितः। तपमानस्य तस्यैव गते काले महत्तरे ॥५॥
न वरं प्रार्थयत्येष लाभालाभसमो मुनिः। एवं तपति तत्रैव गोनिष्क्रमणके मुनौ ॥६॥
ईश्वरो वरदो देवि ! तत्पार्श्वं समुपागतः नापश्यच्चागतं रुद्रमौर्वस्तु समदर्शनः ॥७॥
रुद्रोऽपि व्रीडितस्तत्र स भूतगणसंयुतः। तस्थौ तत्रैव चौर्वोऽपि गङ्गाद्वारमुपागतः ॥८॥
पद्मार्थे निर्गते चौर्वे गताः सर्वे तपस्विनः। तत्पार्श्वे त्वाश्रमे तस्य शून्यं दृष्ट्वा महेश्वरः ॥९॥
नानापुष्पलतावृक्षफलपुष्पविराजितम्। तं दग्ध्वा सगणः शीघ्रं जगाम हिमपर्वते ॥१०॥
एतस्मिन्नन्तरे देवि ! गृह्य पुष्पकरण्डकम्। स्वाश्रमं समनुप्राप्त और्वोऽपि मुनिभिः सह ॥११॥
दृष्ट्वा स्वमाश्रमं दग्धं सत्यव्रतपरायणः। क्षान्तो दान्तः क्षमाशीलो विवेकान्वितमानसः ॥१२॥
दुःखाकुलान् मुनीन् दृष्ट्वा परदुःखपरिप्लुतः। उवाच क्रोधताम्राक्षो वचनं वज्रसंहितम् ॥१३॥
येनैषो चाश्रमो दग्धो बहुपुष्पफलोदकः। सोऽपि दुःखेन सन्तप्तः सर्वलोकान् भ्रमिष्यति ॥१४॥
एवमौर्वेण दत्ते तु शापे तस्मिन् महौजसि। महाभयन्तु लोकानां न कश्चित् पर्यवारयत् ॥१५॥

---

पृथिवीले भनिन् – हे भगवान् ! हजुरले हृषीकेशको महिमा बताउनुभयो। यो बाहेक अरू कुनै गोपनीय र परम पवित्र कुनै क्षेत्र छ भने त्यसको पनि वर्णन गर्नुहोस्। मेरो श्रवण गर्ने ठूलो उत्कण्ठा छ। जहाँ स्नानादि कर्म गरेर मानिसहरू परमपदमा प्राप्त हुन्छन् ॥१–२॥

वराहले भन्नुभयो – हे पृथिवी ! मनुष्यहरूका लागि भोग र मोक्ष दुबै दिने गोप्य अर्को क्षेत्र छ, लोककल्याणका लागि म त्यस क्षेत्रको विषयमा बताउँछु। हिमालयपर्वतमा गोनिष्क्रमण नाम गरेको एउटा प्रसिद्ध तीर्थ छ, जहाँ मैले शिवजीको ताप शान्त गर्न गाईहरू ओरालेको थिएँ। त्यसै तीर्थमा औंर्व ऋषिले सबै इच्छाहरूत्याग गरेर तपस्या गरेका थिए। तपस्याको धेरै समय बित्दा पनि ऋषिले लाभ र हानिलाई एकै मानेर कुनै वर मागेनन्। हे पृथिवी ! त्यस गोनिष्क्रमण क्षेत्रमा ती ऋषिले यसरी तप गरिरहँदा भगवान् शिव आफैं उनको अगाडि उपस्थित हुनुभयो। समदृष्टि भएका औंर्व ऋषिले उपस्थित शिवलाई पनि देखेनन् ॥३–७॥

भूतप्रेतहरूका साथ रहनुभएका शिव पनि लज्जित भई त्यसै ठाउँमा बसिरहनुभयो। औंर्वऋषि भने गङ्गाद्वार पुगे। कमलको फूलका निमित्त औंर्वऋषि आश्रमबाट निस्केपछि अरू सबै तपस्वीहरू पनि आश्रमतर्फ गए। औंर्वऋषिको आश्रमको वरिपरि शून्यता देखेर भगवान् शिवले पनि नानाथरी रुख, लहरा, फल र फूलहरूले सुन्दर त्यस आश्रमलाई जलाएर आफ्ना गणहरूका साथै तुरुन्तै हिमालयपर्वतमा जानुभयो ॥८–१०॥

हे पृथिवी ! यस बीचमा फूलको टेकरी वा डाली लिएर औंर्वऋषि पनि अरू ऋषिहरूका साथ आफ्ना आश्रममा आए॥ सत्यवचनलाई परमगति सम्झिने, शान्त, सहनशील, विवेकी, अर्काको दुःखको अनुभव गर्ने ती ऋषिले सबै ऋषिहरूलाई दुःखले आकुल भएको देखेर रीसले आँखा राताराता गराउँदै वज्रजस्तो कठोर वचन उच्चारण गरे – धेरै फलफूल र पानी भएको मेरो आश्रम जसले जलायो, त्यो पनि दुःखले जलेर लोकलोकान्तरमा भ्रमण गर्नेछ ॥११–१५॥

तत्क्षणादेव सन्तप्तो रुद्रोऽपि जगतो विभुः। उमामुवाच भो देवि ! पश्य मामौर्वशापतः ॥१६॥
परितप्तं क्व गच्छामि कथं शान्तिर्भविष्यति। उमोवाच किमर्थं च ह्याश्रमो दाहितस्त्वया ॥१७॥
विनापराधतः शम्भो ! योऽधर्मं कुरुते ध्रुवम्। ईश्वरोऽपि पदान्नूनं पतेन्नारायणो यथा ॥१८॥
स्वधर्मस्थं बलिं बध्वा छलाद् द्वारपतां गतः। त्यक्त्वा वैकुण्ठभवनं पातकं कं न पातयेत् ॥१९॥

श्रीशिव उवाच

सत्यमुक्तं शिवे ! चैतद्देवैर्भीतः प्रणोदितः। और्वस्य तपसा त्रस्तैरकार्षं कर्म निन्दितम् ॥२०॥
तेनाहं परितप्तोऽस्मि तदुपायान् विचिन्तये। प्रत्युवाच शिवा शम्भुं नारायणगतिर्भवान् ॥२१॥
गच्छ नारायणं शीघ्रं शान्तिः स्यान्नान्यथा क्वचित्। अम्बिकावचनं श्रुत्वा रुद्रो नारायणं प्रति ॥२२॥
जगामाम्बिकया सार्द्धं वैकुण्ठे सगणो धरे। यत्रस्था वैष्णवाः सर्वे विष्णुरूपधरा ध्रुवम् ॥२३॥
कामगेषु विमानेषु नानारत्नोपशोभिषु। ब्रह्माण्डभाण्डसंक्षिप्तकोटिमण्डपवत्स्वपि ॥२४॥
विवेको द्वारपो यत्र दास्यो तेष्वणिमादयः। रमा मार्जनकर्मस्था विद्यादीपप्रबोधिनी ॥२५॥
पशुजन्मप्रदा भक्तिर्भगिनी शुभगा दया। जनको ब्रह्मबोधस्तु सुतः पत्नी शुभा मतिः ॥२६॥
येषु पर्यङ्कवद् ध्यानं धारणा च वितानवत्। तूलिकावल्लयो यत्र मोक्षः कन्दूकवद् ध्रुवम् ॥२७॥
प्रविष्टास्तेषु सत्सङ्गाश्छुद्धसत्त्वा महोदयाः। हरिकीर्तिमहासिन्धुसञ्जातामृतभोजनाः ॥२८॥
तेषां महोदयं दृष्ट्वा हर्षगद्गददवान् शिवः। नमो नारायणायेति ब्रुवन् प्राप्तोऽच्युतान्तिके ॥२९॥
दृष्ट्वा नारायणं देवं महार्हमञ्चकोपरि। नमश्चक्रे महेशानो विष्णुरीशं तथैव च ॥३०॥

तावूचतुः

नमोऽनन्तासनायास्तु नमोऽनन्तोपवीतिने। नमस्ते खगरूढाय वृषारूढाय ते नमः ॥३१॥
नमोऽस्तु ते रमेशाय तथोमेशाय ते नमः। नमस्ते श्यामरूपाय लिङ्गरूपाय ते नमः ॥३२॥

---

और्व ऋषिले ठूलो शक्ति भएको त्यो श्राप दिएपछि कुनै पनि संसारको ठूलो भय निवारण गर्न समर्थ भएन। जगत्का स्वामी भगवान् शिव पनि त्यस समयदेखि सन्तप्त भएर पार्वतीलाई भन्न थाल्नुभयो– हे देवी ! और्वऋषिको श्रापले जलेको मलाई हेर। कहाँ जाऊँ ? कसरी ताप शान्ति होला? त्यसपछि पार्वतीले भन्नुभयो– हे शम्भु ! तपाईंले विना अपराध और्वऋषिको आश्रम किन जलाउनुभयो ?हे शिवजी ! अपराध नगर्दा पनि दण्ड दिएर जसले अधर्म गर्छ, त्यो ईश्वरै भए पनि आफ्नो पदबाट पतित हुन्छ। आफ्नो धर्ममा रहेका राजा बलिलाई छलपूर्वक बाँधेर वैकुण्ठलोक छोडेर पातालमा द्वारपाल बनेका भगवान् विष्णु झैं निश्चय नै आफ्ना पदबाट खस्छ, किनकि पापले कसलाई खसाल्दैन ? ॥१५-१९॥

श्रीशिवले भन्नुभयो – हे पार्वती ! तिमीले सत्य कुरा गर्‍यौ। और्वऋषिको तपस्याबाट भयभीत भएका देवताहरूद्वारा प्रेरित भई डराएर मैले गर्न नहुने निन्दित काम गरें। यसैले म चिन्तित छु। यसपछि पार्वतीले शिवलाई भन्नुभयो – तपाईंको गति नारायणको जस्तै भएकाले तुरुन्त नारायणकहाँ जानुहोस्, शान्ति हुनेछ नत्र कहीं गएर पनि शान्ति हुनेछैन ॥२०-२१½॥

हे पृथिवी ! भगवान् शिव आफ्ना गणलाई साथमा लिएर भगवती पार्वतीका साथ वैकुण्ठमा जानुभयो। जहाँ वैष्णवहरू विष्णुकै रूपमा देखिन्थे। नानाथरी रत्नले परिपूर्ण, इच्छा अनुसार उडान भर्ने, समग्र ब्रह्माण्डलाई संक्षेपीकरण गरी तयार गरिएका र करोडौं मण्डप भएका विमानहरूमा वैष्णवहरू भरिएका थिए। ती विमानहरूमा विवेक द्वारपालका रूपमा, अणिमा आदि सिद्धिहरू दासीका रूपमा, भगवती लक्ष्मी बढारबुढुर गर्ने सेविकाका रूपमा, सरस्वती दीप जलाउने सेविकाका रूपमा, भक्ति पशुजन्म खण्डन गर्ने सद्गुणका रूपमा, शुभ प्राप्ति गराउने दया बहिनीका रूपमा, परब्रह्म परमात्मा पिताका रूपमा, ज्ञान पुत्रका रूपमा र उत्तम बुद्धि पत्नीका रूपमा रहेका थिए। जुन विमानहरूमा ध्यान पलङका रूपमा, धारणा चँदुवाका रूपमा, एकाग्रता रङ्ग लगाउने कुचीका रूपमा र मोक्ष भकुण्डोझैं रहेका थिए ॥२१-२७॥

ती विमानहरूमा व्यक्तिहरू सज्जनको सङ्ग, पवित्र पराक्रम एवं अपरिमित ऐश्वर्य भएका र हरिकीर्तनरूपी सागरबाट उत्पन्न अमृतको भोजन गर्ने सज्जनहरू पनि प्रविष्ट भएका छन्। वैकुण्ठलोकमा प्रवेश गर्नेहरूको त्यस्तो ठूलो ऐश्वर्य देखेर हर्षले गद्गद हुनुभएका भगवान् शिव नारायणलाई नमस्कार गर्दै उहाँको समीपमा जानुभयो। बहुमूल्य मञ्चमाथि नारायण भगवान्लाई देखेर महादेवले नमस्कार गर्नुभयो र विष्णुले पनि त्यसरी नै महादेवलाई नमस्कार गर्नुभयो ॥२८-३०॥

शिव र विष्णुले भन्नुभयो – अनन्त अर्थात् शेषनागलाई शय्या बनाउनुहुने विष्णुलाई नमस्कार छ। शेषनागलाई जनैका रूपमा धारण गर्ने शङ्करलाई नमस्कार छ। गरुडवाहन भएका विष्णुलाई नमस्कार छ र साँढे वाहन भएका शिवलाई नमस्कार छ। लक्ष्मीका पति तपाईं विष्णुलाई नमस्कार छ। पार्वतीका पति तपाईं शिवलाई नमस्कार छ। नीलो रूप वर्णभएका तपाईं विष्णुलाई नमस्कार छ र लिङ्गका रूपधारण गर्ने तपाईं शिवलाई नमस्कार छ ॥३१-३२॥

विश्वकर्त्रे नमस्ते ते विश्वहर्त्रे नमो नमः। नमस्ते सत्त्वरूपाय शिवरूपाय ते नमः ॥३३॥
नमो मध्वादिरिपवे नमस्ते त्रिपुरारये। नमस्ते बलियज्ञघ्न ! दक्षयज्ञघ्न ते नमः ॥३४॥
नमस्ते कामगुरवे सेनानीगुरवे नमः। नमस्ते पद्मनेत्राय त्रिनेत्राय नमो नमः ॥३५॥
नमस्तारकरूपाय नमस्ते प्रणवात्मने। नमस्ते ज्ञानधीराय ध्यानधीराय ते नमः ॥३६॥
नमः शंखादिहस्ताय पिनाकपाणये नमः। नमो मन्त्रकृते तुभ्यं तुभ्यं तन्त्रकृते नमः ॥३७॥
नमः सुकेशभालाय चन्द्रभालाय ते नमः। नमस्त मणिहाराय फणिहाराय ते नमः ॥३८॥
नमः पीताम्बरायास्तु दिगम्बराय ते नमः। नमस्ते वेदगीताय वेदपूज्याय ते नमः ॥३९॥
दशमूर्ते ! नमस्तेऽस्तु नमस्ते चाष्टमूर्तये। नमस्ते ब्रह्मरूपाय ब्रह्मणे ते नमो नमः ॥४०॥
एवं परस्परं स्तुत्वा नत्वा प्राप्तौ तथैकताम्। सगणो हरिवच्छम्भुरच्युतः शिववत् क्षणम् ॥४१॥
दृष्ट्वा ब्रह्मादयो देवा मुमुहू संशयाम्बुधौ। ततो व्यक्तावुभौ सिद्धौ स्मितास्यौ पूर्ववद् विभू ॥४२॥

शम्भुरुवाच

और्वशापादहं विष्णो ! न शक्नोमि विचेष्टितुम्। तप्तोऽहं तावकौ पादौ तापशान्तिकरौ परौ ॥४३॥
तदुपायविधौ त्वं हि समर्थो वेदविद् विभुः। यतस्त्वं पालकोऽस्माकं त्रैलोक्यस्यादितां गतः ॥४४॥

विष्णुरुवाच

स मुनिः सर्वभूतानि चैकत्वमनुपश्यति। मानमत्सरशोकादिरागद्वेषविवर्जितः ॥४५॥
तत्रोपायं न पश्यामि साम्नस्त्वन्यन्न कश्चन। तदाश्रमं वयं सर्वे गच्छामो नात्र संशयः ॥४६॥
ततस्तौ जग्मतुस्तत्र देवौ ब्रह्मादिभिः सह। और्वं सम्प्रार्थयामासुः शापशान्त्यर्थमादरात् ॥४७॥

---

पालनका रूपमा विश्व बनाउने तपाईं विष्णुलाई नमस्कार छ। प्रलयका रूपमा विश्वहरण गर्ने तपाईं शिवलाई नमस्कार छ। सत्त्व (गुण र प्राणी)को रूप लिने तपाईं विष्णुलाई नमस्कार छ। कल्याणको रूप लिने तपाईं शिवलाई नमस्कार छ। मधु आदि नाम भएका दैत्यका शत्रु विष्णुलाई नमस्कार छ। त्रिपुरका शत्रु तपाईं शिवलाई नमस्कार छ। राजा बलिको यज्ञ नाश गर्ने तपाईं विष्णुलाई नमस्कार छ। दक्षप्रजापतिको यज्ञनाश गर्ने तपाईं शिवलाई नमस्कार छ। प्रद्युम्नका पिता तपाईं विष्णुलाई नमस्कार छ। स्कन्दका पिता तपाईं शिवलाई नमस्कार छ। कमलजस्ता सुन्दर आँखा भएका तपाईं विष्णुलाई नमस्कार छ। तीन आँखा भएका तपाईं शिवलाई नमस्कार छ ॥३३-३५॥

तारकमन्त्रको रूप लिने विष्णुलाई नमस्कार छ। ॐकारको रूप लिने तपाईं शिवलाई नमस्कार छ। ज्ञानले धीर भएका तपाईं विष्णुलाई नमस्कार छ। ध्यानले धीर भएका तपाईं शिवलाई नमस्कार छ। शंख, चक्र, गदा आदि आयुध हातमा लिने विष्णुलाई नमस्कार छ। पिनाक नामक धनु हातमा लिने शिवलाई नमस्कार छ। मन्त्र बनाउने विष्णुलाई नमस्कार छ।तन्त्र(शास्त्र) बनाउने शिवलाई नमस्कार छ। शिरमा सुन्दर कपाल भएका विष्णुलाई नमस्कार छ। शिरमा चन्द्रमा भएका शिवलाई नमस्कार छ। मणिहरूको माला धारण गर्ने विष्णुलाई नमस्कार छ। सर्पहरूका माला धारण गर्ने शिवलाई नमस्कार छ। पहेंलो कपडा लगाउने विष्णुलाई नमस्कार छ। दिशारूपी कपडा धारण गर्ने (दिगम्बर)लाई नमस्कार छ। वेदहरूले गाइएका तपाईं विष्णुलाई नमस्कार छ। वेदहरूमा पूजा गरिने तपाईं शिवलाई नमस्कार छ ॥३६-३९॥

१० अवतारधारण गर्ने विष्णुलाई नमस्कार छ। आठ मूर्तिहरू धारण गर्ने शिवलाई नमस्कार छ। परब्रह्मको रूपधारण गर्ने तपाईं विष्णुलाई नमस्कार छ। ब्रह्माण्डको रूपधारण गर्ने तपाईं शिवलाई नमस्कार छ। यसरी शिव र विष्णु एक अर्कालाई स्तुति र नमस्कार गरेर एकै समयमा गणले युक्त भएका शिव विष्णुभैँ र विष्णु शिवभैँ एउटै स्वरूपमा पुग्नुभयो। एउटै रूप देखेर ब्रह्मा आदि देवताहरू शङ्काको समुद्रमा डुबेर मोहित भए। त्यसै कारणले परमात्मा शिव र विष्णु दुबै हाँस्दै पहिले भैँ आफ्नो स्पष्टरूपमा सिद्ध हुनुभयो ॥४०-४२॥

शिवले भन्नुभयो – हे विष्णु ! म और्वऋषिका श्रापले सास फेर्न पनि सक्दिन। म जलेको छु। तपाईंका चरणकमलले मेरो नाप नाश गरून्। वेद जान्ने तपाईं परमात्मा नै तापशान्तिको उपाय पत्ता लगाउन समर्थ हुनुहुन्छ। किनकि तपाईं हामीहरूको तीनै लोकको संरक्षक हुनुहुन्छ ॥४३-४४॥

विष्णुले भन्नुभयो – मान, रीस, शोक आदि द्वेषबाट युक्त भएका ती ऋषि (और्व) सबै प्राणीहरूलाई समान रूपमा दर्शन गर्छन्। तापशान्ति गर्ने काममा म मधुरवचन भन्दा अरू कुनै उपाय देख्दिन। हामी सबै उनै और्व ऋषिको आश्रममा जान्छौं, यसमा कुनै संशय छैन। यसरी निश्चय गरेपछि शिव र विष्णु ब्रह्मा आदि देवताहरूका साथ और्वऋषिको आश्रममा जानुभयो र सरापलाई शान्त पार्नका लागि आदरपूर्वक और्व ऋषिको प्रार्थना गर्नुभयो ॥४५-४७॥

और्वोऽप्युवाच नोक्तिर्मे त्वनृता स्यात् कदाचन। सुरभिः सकुला चात्राऽऽनेया च क्षीरसागरात् ॥४८॥
तद्द्रव्यैर्मधुखण्डाक्तैः स्नापयन्तु शिवं किल। रुद्रः शापान्निवृत्तः स्यात् तेनैव किल नान्यथा ॥४९॥

श्रीवराह उवाच

एतस्मिन्नन्तरे देवि ! मया गावोऽवतारिताः। सौरभेया महौजस्काः सप्तसप्ततिसंख्यकाः ॥५०॥
यत्रावतारिता गावस्तत्र गोकर्मणा स्मृतम्। गोघट्टं चापि तत्प्रोक्तं तच्च त्रैलोक्यविश्रुतम् ॥५१॥
ताभिरापाविता देशाः सप्तद्वीपभवाः किल। द्वीपे द्वीपे दश दश मया गाः प्रापिता धरे ! ॥५२॥
गोपितास्तत्र सप्तैव यासां दुग्धं पिबाम्यहम्। आश्चर्यञ्च महाभागे ! तस्मिन् क्षेत्रे न संशयः ॥५३॥
अथात्र जेष्ठमासस्य शुक्लायां द्वादशीतिथौ। गवां वै श्रूयते शब्दः श्रोतुः सर्वसुखावहः ॥५४॥
तत्र स्नात्वा गवां भक्त एकरात्रोषितो नरः। गोलोकञ्च समासाद्य मोदते नात्र संशयः ॥५५॥
अथात्र मुञ्चति प्राणान् कृत्वा कर्म सुदुष्करम्। शंखचक्रगदापद्मयुक्तो मल्लोकपूजितः ॥५६॥
पञ्चधाराः पतन्त्यत्र मूले मूलवटस्य च। तत्र स्नात्वा हरिं ध्यात्वा पञ्चरात्रोषितो नरः ॥५७॥
पञ्चानामपि यज्ञानां फलं प्राप्नोति मानवः। अथात्र मुञ्चति प्राणान् कृत्वा कर्म यथाविधि ॥५८॥
पञ्चयज्ञफलं भुक्त्वा मम लोकं प्रपद्यते। अस्ति पञ्चपदं नाम तस्मिन् क्षेत्रे पदं मम ॥५९॥
म पूर्वेण पार्श्वेन दृढाः पञ्च महाशिलाः। मत्पूर्वदिशमाश्रित्य तत्र ब्रह्मपदद्वयम् ॥६०॥
तत्र मध्यगते कुण्डे शिला विस्तीर्णताश्रिता। ऊर्ध्वनालपरीणाहं तत्र विष्णुपदं मम ॥६१॥
तत्र स्नात्वा प्रकुर्वीत पञ्चरात्रोषितो नरः। याति शुद्धेषु लोकेषु भक्तप्रियतमेषु च ॥६२॥
अथात्र मुञ्चति प्राणान् तीर्थे पञ्चपदे नरः। विमुक्तः सर्वसंसारान्मम लोकं स गच्छति ॥६३॥

---

और्व ऋषिले भने – मेरो सराप कहिल्यै पनि झूटो हुँदैन। सन्ततिसहित कामधेनु गाईलाई क्षीरसागरदेखि यहाँ ल्याएपछि अमृत मिसिएको उनको दूधले शिवलाई स्नान गराउनुपर्दछ। यही उपायले शिव सरापबाट मुक्त हुनुहुनेछ, तर अरू उपायबाट मुक्त हुनुहुनेछैन ॥४८–४९॥

श्रीवराहले भन्नुभयो – हे देवी ! यसै बीचमा मैले ७७ वटा तेजिला कामधेनुहरू ओरालें। जहाँ मैले गाईहरू ओरालें, त्यो गाईको कर्मद्वारा सम्भिएको और्वगली–अर्गली पाल्पामा रहेको गाईघाटक्षेत्र तीनलोकमा प्रसिद्ध भयो। ७ द्वीपहरूमा रहेका देशहरू ती गाईहरूद्वारा नै पवित्र भए। हे पृथिवी ! मैले सात द्वीपहरूमा १०–१० गाईहरू पुऱ्याएँ ॥५०–५२॥

हे भाग्यमानी पृथिवी ! आश्चर्यको कुरा छ कि ७ वटी गाईहरू त्यस गाईघाटमा नै मैले लुकाएँ। मैले गाईघाट क्षेत्रमा रहेर ती गाईको दूध पिउँछु। अहिलेसम्म यस गाईघाटमा जेठको शुक्लपक्षको द्वादशीका दिन श्रवण गर्नेहरूलाई परम आनन्द प्रदान गर्ने गाईहरूको आवाज सुनिन्छ। त्यहाँ गाईको भक्त भएर एक रात रही उपवास गर्ने मानिस गोलोकमा पुगेर प्रसन्न हुन्छ, यसमा शङ्का छैन। जुन मानिसले यस क्षेत्रमा उत्तम कर्म गरेर प्राणत्याग गर्छ, त्यो शङ्ख, चक्र, गदा र कमल धारण गरी मेरो लोक वैकुण्ठमा पूजा गरिन्छ। यस क्षेत्रमा मुख्य वटवृक्षको जरामा ५ धाराहरू खस्छन्, त्यहाँ नुहाएर भगवान् नारायणको ध्यान गरी ५ रातसम्म उपवास बस्ने मानिसले ५ यज्ञहरूको फल पाउँछ। जुन मानिसले ५ धाराहरू बगेको यस ठाउँमा विधिपूर्वक उत्तम कर्म गरेर प्राणत्याग गर्छ, त्यो मानिस ५ यज्ञहरूको फल भोगेर मेरो वैकुण्ठमा प्राप्त हुन्छ। त्यस क्षेत्रमा पञ्चपद नाम गरेको मेरो स्थान छ ॥५३–५९॥

मेरो स्थानको पूर्वदिशाको आसपासमा ५ वटा बलिया ठूला शिलाहरू छन्, त्यहाँ मेरो पूर्वदिशामा रहेका २ वटा ब्रह्मपद छन्। त्यहाँ माझखण्डमा शिला फैलिएर रहेको छ, त्यहाँबाट माथिको नालीसम्म फैलिएको मेरो विष्णुपद रहेको छ। त्यहाँ स्नान गरेर ५ रातसम्म उपवास गर्ने मानिस मेरा भक्तहरूलाई मन पर्ने शुद्ध लोकहरूमा जान्छ। जुन मानिसले यस पञ्चनद तीर्थमा प्राणत्याग गर्छ, सबै संसारको बन्धनबाट मुक्त भएर मेरो लोक वैकुण्ठमा जान्छ ॥६०–६३॥

तत्र ब्रह्मपदं नाम क्षेत्रं गुह्यं परं मम। यत्र धारा पतत्येका पश्चिमां दिशमाश्रिता ॥६४॥
तत्र स्नानञ्च कुर्वीत चैकरात्रोषितो नरः। ब्रह्मलोकमवाप्नोति ब्रह्मणा सह मोदते ॥६५॥
कौमुदस्य तु मासस्य शुक्लपक्षस्य द्वादशी। त्रयाणां वाजपेयानां फलमाप्नोति मानवः ॥६६॥
अथात्र मुञ्चति प्राणान् मम कर्मसु निष्ठितः। वाजपेयफलं भुक्त्वा मम लोके प्रमोदते ॥६७॥
अस्ति कोटिवटं नाम तस्मिन् क्षेत्रे पदं मम। वायव्यदिशमाश्रित्य पञ्चक्रोशप्रमाणतः ॥६८॥
तत्र स्नानं प्रकुर्वीत वटे कालोषितो नरः। समाप्तकोटियज्ञानां फलमाप्नोति निष्कलम् ॥६९॥
अथात्र मुञ्चति प्राणान् भूमौ कोटिवटे शुभे। कोटियज्ञफलं भुक्त्वा मम लोके महीयते ॥७०॥
अस्ति विष्णुसरो नाम तस्मिन् क्षेत्रेऽपरं मम। पूर्वोत्तरेण पार्श्वेन पञ्चक्रोशप्रमाणतः ॥७१॥
अगाधं तत्सरो देवि ! पञ्चक्रोशप्रमाणकम्। तत्र भ्रमति यो भद्रे ! कुर्याच्चैव प्रदक्षिणाम् ॥७२॥
उपवासं त्रिरात्रन्तु कृत्वा सत्कर्मसंस्थितः। यावन्ति भ्रममाणस्य पदानि सन्तु सुन्दरि ॥७३॥
तावद् वर्षसहस्राणि ब्रह्मलोके महीयते। अथात्र मुञ्चति प्राणान् स्वकर्मपरिनिष्ठितः ॥७४॥
ब्रह्मलोकं समुत्सृज्य मम लोके महीयते। शुचौ शुक्ले च द्वादश्यां गवां शब्दोऽत्र सुन्दरि ! ॥७५॥
श्रूयते महदाश्चर्यं श्रोतुः पापहरः परः। अत्र गोस्थलके तीर्थे श्राद्धं यः कुरुते नरः ॥७६॥
तारयेत् सप्त गोत्राणि गयाश्राद्धफलं लभेत्। यः कुर्याच्छुभकार्याणि स गच्छेत् परमं पदम् ॥७७॥
अत्र शापाद् विनिर्मुक्तो गोगोविन्दप्रसादतः। रुद्रोऽपि सगणो देवि ! को न शान्तिं व्रजेन्नरः ? ॥७८॥
एतद् गोस्थलकं नाम सर्वशान्तिकरं परम्। तवाग्रे कथितं देवि !लोकानां हितकाम्यया ॥७९॥
एषोऽध्यायो महाभागे ! सर्वमङ्गलकारकः। सिद्धिदः सर्वकार्याणां मम प्रीतिकरः परः ॥८०॥
सर्वमङ्गलमाङ्गल्यः सर्वस्वस्त्ययनो महान्। लाभानां परमो लाभो धर्माणां धर्म उत्तमः ॥८१॥

---

पश्चिमदिशाको आड लिएर जहाँ एउटा धारा झर्छ, त्यहाँ ब्रह्मपद नाम गरेको मेरो गोप्य र उत्तम क्षेत्र छ। त्यहाँ स्नान गरेर १ रात उपवास गर्ने मानिस ब्रह्मलोक पुग्छ र ब्रह्माजीसँग बस्न पाएर रमाउँछ। कार्तिकमहिनाको शुक्लपक्षको द्वादशीमा स्नान गरेर १ रात उपवास गर्ने मानिसले तीनवटा वाजपेययज्ञ सम्पन्न गरेको फल पाउँछ। मेरो कर्म पूजा आदिमा श्रद्धा गर्ने जुन मानिसले यस पञ्चनदतीर्थमा प्राणत्याग गर्छ त्यो मानिस वाजपेययज्ञको फल भोगेर मेरो लोक वैकुण्ठमा पुगी प्रसन्न हुन्छ। त्यस क्षेत्रमा वायव्यदिशातर्फ रहेको ५ कोशमा फैलिएको कोटिवट नाम गरेको मेरो स्थान छ ॥६४-६८॥

त्यस कोटिवटमा स्नान गरी समयमा उपवास गर्ने मानिस करोडौं सम्पन्न गरिएका यज्ञहरूको पूर्णफल प्राप्त गर्छ। जुन मानिसले यस पवित्र कोटिवटको भूमिमा स्नान गर्छ, त्यो करोडौं यज्ञहरूको फल भोगेर मेरो लोकमा गई सम्मानित हुन्छ। त्यस क्षेत्रमा ऐशान्यदिशाको आसपासमा ५ कोश बराबरको विष्णुसार नाम गरिएको अर्को मेरो स्थान छ ॥६९-७१॥

हे पृथिवी ! ५ कोशबराबरको त्यो विष्णुसरोवर गहिरो छ। हे कल्याण गर्ने पृथिवी ! जुन मानिसले त्यस तलाउको प्रदक्षिणा गर्छ र तीन रातसम्म उपवास गरेर उत्तम कर्म गर्दछ, त्यो मानिस जति जति पाइलाहरू घुम्छ, त्यति हजार वर्ष ब्रह्मलोकमा शोभायमान हुन्छ। आफ्नो कर्ममा संलग्न रहेर यहाँ प्राण त्याग गर्ने मानिस ब्रह्मलोक पनि छोडेर मेरो लोक वैकुण्ठमा पूजित हुन्छ। हे सुन्दरी ! ठूलो आश्चर्य छ कि जेष्ठशुक्लद्वादशीका दिन यस क्षेत्रमा सुन्नेहरूको पापनाश गर्ने गाईहरूको उत्तम शब्द सुनिन्छ। जुन मानिसले यहाँको गाईघाट तीर्थमा श्राद्ध गर्छ, त्यसले ७ कुल तार्छ र गयाश्राद्ध गरेको फल पाउँछ। जुन मानिसले यहाँ शुभकार्य गर्छ, त्यसल परमपद प्राप्त गर्छ ॥७२-७७॥

हे पृथिवी ! गाई र गोविन्दको कृपाले यहाँ सरापबाट मुक्त हुनुभएका गणसहित भगवान् शिव शान्त हुनुभयो। यहाँ शुभ कर्म गर्दा कुन मानिस शान्त नहोला ? यो गाईघाट नामक तीर्थ सबैलाई शान्ति प्रदान गर्ने परम तीर्थ हो। हे देवी ! सबै मानिसहरूको कल्याणको कामना गरी मैले तिम्रा सामु यसको महिमा बताएँ। यो गण्डकीमहात्म्यको छैठौं अध्याय सबैको कल्याण गर्ने, सबै काममा सिद्धि प्रदान गर्ने र मेरो प्रसन्नता दिने उत्तम अध्याय हो। यो अध्याय मङ्गलमा मङ्गल, सबै कल्याणहरूको महान् आश्रय, लाभहरूमा उत्तम लाभ र धर्महरूमा उत्तम धर्मका रूपमा रहेको छ ॥७८-८१॥

पठन्तो ये लभन्ते वै मम मार्गानुसारिणः। तेजः श्रियञ्च लक्ष्मीञ्च यशोविद्यासुतादिकम् ॥८२॥
यावन्ति चाक्षराणि स्युरत्राध्याये मनस्विनि !। तावद् वर्षसहस्राणि मम लोके महीयते ॥८३॥
पतनं विद्यते नैव पठनाच्च दिने दिने। तारितानि कुलान्येभिः सप्त सप्त च सप्त च ॥८४॥
पिशुनाय न दातव्यो न मूर्खाय शठाय च। देयः पुत्राय शिष्याय गुरुभक्ताय धर्मिणे ॥८५॥
एवं मरणकाले तु विस्मरेन्न कदाचन। श्लोकं वा यदि वा पादं यदीच्छेत् परमां गतिम् ॥८६॥
तत्क्षेत्रे तु महाभागे ! पञ्चयोजनमण्डले। तिष्ठामि परया प्रीत्या दिशं पूर्वामुपाश्रितः ॥८७॥
पश्चिमेन वहेद् गङ्गा निष्क्रमेण वसुन्धरे ! एतच्च ब्रह्मणो गुह्यं सर्वकर्मसुखावहम् ॥८८॥
एतत् ते परमं भद्रे ! गुह्यं धर्मसमन्वितम्। मम क्षेत्रञ्च कथितं पृष्टं यच्छ्रद्धया त्वया ॥८९॥

श्रीकाशीराम उवाच

माहात्म्यं परमञ्चैव गोविन्दगण्डकीगवाम्। यः शृणोति नरो ब्रह्मन् ! स गच्छेत् परमं पदम् ॥९०॥

इति गोनिष्क्रमणाख्यानं नाम षष्ठोऽध्यायः ॥

---

यो अध्याय पढ्ने र मेरो मार्गको अनुसरण गर्ने मानिसहरू तेज, शोभा, सम्पत्ति, कीर्ति, विद्या र सन्तति प्राप्त गर्न सफल हुन्छन्। हे निर्मल बुद्धिले सुहाएकी पृथिवी ! यो अध्याय पढ्ने मानिस यस अध्यायमा जति अक्षरहरू छन्, त्यति हजार वर्षसम्म मेरो लोकमा गई शोभायमान हुन्छ। प्रतिदिन यस अध्यायको पाठ गर्ने मानिसहरूको पतन नै हुँदैन र यी अध्यायको पाठ गर्ने मानिसले २१ कुललाई तार्दछन्। यो अध्याय तुच्छ, मूर्ख, र शठलाई दिन (सुनाउन) ठीक हुँदैन तर धार्मिक पुत्र र गुरुभक्त शिष्यलाई दिन र सुनाउन उत्तम हुन्छ। कुनै मानिसले यदि परमगति चाहन्छ, त्यसले मृत्युको समयमा यस अध्यायका श्लोक वा पादहरूलाई बिर्सन हुँदैन। हे भाग्यमानी पृथिवी ! २० कोश घेरा भएको गोनिष्क्रमण तीर्थमा म विष्णु पूर्वदिशाको आश्रय दिएर परमप्रेमका साथ रहन्छु ॥८२-८७॥

हे पृथिवी ! यस क्षेत्रमा पश्चिमतर्फ निस्कने बाटो गङ्गा बहन्छिन्। यो क्षेत्र सबै कर्ममा सुख दिने ब्रह्माण्डको गोप्य क्षेत्र हो। हे कल्याणी ! जुन तिमीले श्रद्धापूर्वक सोधेकी थियौ त्यो धार्मिक, उत्तम र गोप्य मेरो क्षेत्रबारे मैले तिमीलाई बताएँ ॥८८-८९॥

श्रीकाशीरामले भने – हे ब्राह्मण ! गोविन्द, गण्डकी र गाईको यो उत्तम माहात्म्य जुन मानिसले सुन्छ त्यो परमपदमा पुग्दछ ॥९०॥

गोनिष्क्रमणाख्यान नामक छैठौं अध्याय समाप्त भयो।

## सातौं अध्याय : आदिप्रयाग (देवघाट) वर्णन

श्रीभगवच्छर्मोवाच

श्रुत्वा गोनिष्क्रमस्येदं माहात्म्यं सुरवल्लभम्। सञ्जाता गण्डकीभक्तिः प्रसादात्तव पापहा ॥१॥
माहात्म्यं गण्डकीनद्योः सङ्गमस्य धरामर ! धरावराहसंवादे यथोक्तं तत्त्वतो वद ॥२॥
किन्नाम तत्र के देवाः किं देवाः किं विशिष्टं कथं शुभम्। ब्रूहि ब्रह्मन् ! वराहोक्तं पुराणं ब्रह्मसम्मितम् ॥३॥
शृणु ब्रह्मन् ! वराहोक्तं गण्डकीसङ्गमस्य वै। यथाबुद्धि प्रवक्ष्यामि माहात्म्यं धरया श्रुतम् ॥४॥

---

भगवत् शर्माले भने – तपाईं काशीरामको कृपाद्वारा देवताहरूलाई पनि प्यारो लाग्ने गोनिष्क्रमणक्षेत्रको यस्तो माहात्म्य सुनेर मेरो हृदयमा पापनाशक गण्डकीप्रति भक्ति पैदा भयो। हे ब्राह्मण ! पृथिवी र वराहको संवादका रूपमा भनिएको गण्डकी नदीहरूको सङ्गमतीर्थ देवघाटको माहात्म्य यथार्थ रूपमा बताउनुहोस्। हे ब्राह्मण ! गण्डकी सङ्गमको नाम के हो ? त्यहाँ कुन कुन देवताहरू छन् ? त्यसको के विशेषता छ ? कसरी पुण्य हुन्छ ?यी विषयमा भगवान् वराहले भनिएको ब्रह्मसमान पुराणको उपदेश बताउनुहोस्। हे ब्राह्मण ! वराहले पृथिवीलाई सुनाएको काली र त्रिशूलीको दोभान देवघाटको को माहात्म्य म आफ्नो बुद्धिअनुसार भन्दछु, सुन्नुहोस् ॥१-४॥

धरण्युवाच

अहो ! वै गण्डकीनद्या माहात्म्यं देवदुर्लभम्। श्रुत्वा तव मुखाम्भोजादाभ्यन्तरगतं मनः ॥५॥
नष्टञ्च बाह्यावयवं पावितञ्च तदम्बुभिः। शालग्रामसमायोगाद् भवाब्धौ मुक्तिदा विभो ॥६॥
माहात्म्यं गण्डकीनद्योः सङ्गमस्य वद प्रभो। किं नाम तत्र के देवाः किं विशिष्टं कदा भवेत् ॥७॥

श्रीवराह उवाच

शृणु भद्रे ! प्रवक्ष्यामि क्षेत्रं गुह्यं परं मम। सम्भेदो देवनद्योस्तु समस्तसुरवल्लभः ॥८॥
दिवोऽवतीर्य तिष्ठन्ति तत्र ब्रह्मादयो धरे ! सगणास्ते विमानस्थाः साङ्गोपाङ्गाः सदारकाः ॥९॥
कुमाराः सगणा रुद्राः सप्त ब्रह्मर्षयोऽमलाः। धर्मो दक्षो नारदश्च कर्दमो मनवोऽपि च ॥१०॥
इन्द्रोपेन्द्रौ सदिक्पालौ सिद्धाश्च कपिलादयः। पितरो वसवो विश्वे मरुतो मातरस्तथा ॥११॥
गन्धर्वाप्सरसो विद्याधरा गुह्यककिन्नराः। यक्षरक्षःपिशाचाश्च योगिनीभैरवादयः ॥१२॥
गणका भूतवेताला दैत्यदानवसैंहिकाः। ऋषयो मुनयो वैद्यौ सर्वाश्च धेनवो धरे ! ॥१३॥
ध्रुवादितारकाः सर्वे भास्करादिग्रहास्तथा। सर्वे शेषादयो नागा दैत्याः प्रह्लादकादयः ॥१४॥
आगच्छन्ति मम क्षेत्रे सप्तपातालवासिनः। आग्नीध्रप्रमुखाः सर्वे सप्तद्वीपनिवासिनः ॥१५॥
त्रैलोक्ये यानि तीर्थानि यानि तीर्थानि भारते। आत्मनः शुद्धिमिच्छन्ति सदा गच्छन्ति पर्वसु ॥१६॥
समायानं हि देवानां भवतीत्थं धरे ! ध्रुवम्। देवघट्टमिति क्षेत्रं प्रसिद्धञ्च धरे ! तथा ॥१७॥
नैपालं शङ्करक्षेत्रं समस्तसुरवल्लभम्। ततस्तीर्थविशेषाणि समायान्ति महान्ति च ॥१८॥
महादेवजटाजूटान्नीलकण्ठाच्छिवालयात्। नैपालजाततीर्थैश्च मिलिता सा महानदी ॥१९॥
आयाति शूलगङ्गेति देवानामपि दुर्लभा। पारकोटं महाक्षेत्रं देवानां गुप्तमन्दिरम् ॥२०॥
तत्र जातमहातीर्थैर्मिलिता शुक्लगण्डकी। शुक्ला च शूलगङ्गा च सम्भूय परमादरम् ॥२१॥

---

पृथिवीले भनिन् – अहो ! देवताहरूका लागि पनि दुर्लभ गण्डकीको महिमा हजुरका मुखारविन्दबाट श्रवण गरेर मेरो मनले गण्डकीभित्र प्रवेश गऱ्यो। हे भगवान् ! बाहिरी अवयव नष्ट भयो र मन गण्डकीको जलद्वारा पवित्र भयो। संसाररूपी सागरमा शालग्रामका सम्पर्कले गर्दा गण्डकी मुक्तिदायिनी बनेकी छन्। हे भगवान् ! गण्डकीसङ्गमको नाम के हो ? त्यहाँ कुन कुन देवताहरू छन् र त्यसको के विशेषता छ ? यी प्रश्नहरूको उत्तर दिँदै गण्डकी नदीहरूको सङ्गम पवित्रतीर्थ देवघाटको महिमा बताउनुहोस् ॥५-७॥

श्रीवराहले भन्नुभयो – हे कल्याणी ! सबै देवताहरूको निमित्त प्यारो दुई दिव्यनदीहरूको सङ्गम देवघाट उत्तम र गोप्य मेरो क्षेत्र हो भन्ने विषयमा बताउनेछु। हे पृथिवी ! त्यस देवघाटमा आफ्ना गण, अङ्ग , उपाङ्ग र पत्नीहरूका साथ विमानमा रहेका ब्रह्मा आदि देवताहरू दिउँसो नै ओर्लेर बस्छन् ॥८-९॥

हे पृथिवी ! कुमारहरू, गणसहित रुद्रहरू, निष्पाप सात ब्रह्मर्षिहरू, धर्मराज, दक्षप्रजापति, नारद, कर्दमऋषि, मनुहरू, दिक्पालहरूका साथै इन्द्र र उपेन्द्र, कपिल आदि सिद्धहरू, पितृहरू, आठ वसुहरू, विश्वेदेवहरू, ४९ वायुहरू, १६ मातृकाहरू, गन्धर्व र अप्सराहरू, विद्याधरहरू, यक्ष र किन्नरहरू, राक्षस र पिशाचहरू, योगिनी र भैरव आदिका गणहरू भूत र वेतालहरू, दैत्य दानव र राहुहरू, ऋषिमुनिहरू, अश्विनीकुमारहरू, सारा गाईहरू, ध्रुव आदि ताराहरू, सूर्य आदि ग्रहहरू,७ पातालमा बस्ने शेष आदि सबै नागहरू, प्रह्लाद आदि दैत्यहरू र ७ द्वीपहरूमा बस्ने आग्नीध्र आदि राजाहरू पनि मेरो गण्डकीसङ्गम देवघाट क्षेत्रमा आउँछन्। हे पृथिवी ! तीनै लोकमा जति तीर्थ र भारतमा जति तीर्थ छन् ती सबै आफ्नो शुद्धी चाहन्छन् र पर्वहरूमा सधैँ देवघाटमा जम्मा हुन्छन् ॥१०-१६॥

हे पृथिवी ! जसरी यहाँ देवताहरूको भेला हुन्छ, त्यसरी नै हे पृथिवी ! यो क्षेत्र देवघाट नामले प्रसिद्ध छ॥१७॥ नेपाल शङ्करक्षेत्र हो र सबै देवताहरूका लागि प्रिय तीर्थ भएकाले नै ठूला तीर्थविशेषहरू यहाँ यहाँ आउँछन् ॥१८॥ देवघाट क्षेत्रमा कल्याणको आश्रय भएको गोसाईकुण्डदेखि महादेवको जटाबाट उत्पन्न भएर नेपालमा उत्पन्न भएका तीर्थहरूसँग मिल्दै देवताहरूका लागि पनि दुर्लभ हुने त्रिशूली नामकी महानदी आउँछिन्। पारकोट नाम गरेको ठूलो क्षेत्र देवताहरूका लागि गोप्य आश्रम हो। त्यहाँ उत्पन्न भएका ठूला तीर्थहरूसँग सेती गण्डकी मिलेकी छिन्। सेती र त्रिशूली मिलेर यस देवघाटधाममा आदरपूर्वक कालीसँग भेट गर्न आउँछन् ॥१९-२१॥

हिमालयो नगाधीशो देवानां परमाश्रयः । तच्छृङ्गो मत्स्यशृङ्गाख्यो वैकुण्ठसदृशो ध्रुवम् ॥२२॥
तत्रस्थौ परमौ देवौ नरनारायणाभिधौ । तयोरेकः श्यामलाङ्गस्तद्गण्डस्वेदजा नदी ॥२३॥
सैव कृष्णागण्डकीति ब्रह्मणोऽप्यतिदुर्लभा । मुक्तिक्षेत्रादिकैस्तीर्थैः समेता कृष्णगण्डकी ॥२४॥
सङ्गमोऽत्र मम क्षेत्र एतासां सरितां धरे ! वशिष्ठोऽपि महाबुद्धिश्चकार परमं तपः ॥२५॥
शताश्वमेधयज्ञश्च महादानान्यनेकशः । महाविभवविस्तारैः श्राद्धञ्च पर्वपर्वसु ॥२६॥
ततो ब्रह्मसुताः सर्वे मनवो देवदानवाः । खेचरा भूचराः सप्तपातालस्थाश्चराचराः ॥२७॥
महाविभवविस्तारैश्चक्रुर्यागादिकाः क्रियाः । मम क्षेत्रे महादेवि ! मद्दर्शनसमुत्सुकाः ॥२८॥
सकलोऽहं कलातीतस्तेषां मध्ये सहस्रधा । प्रत्यक्षमभवं तांस्तु वरान् ब्रूवेति चाब्रुवम् ॥२९॥
ततो मत्तेजसा सर्वे परिम्लानपराक्रमाः । विचित्राश्चित्रतां प्राप्ताः प्रणेमुर्मां मदीक्षणात् ॥३०॥
नानाननिमित्तेभ्यो जातैकवृत्तरूपया । नुनुवुर्नानारूपाणि वाण्या मे गौरवार्थया ॥३१॥
षड्स्थःपञ्चपदश्चतुर्वलयितस्त्रिष्ठो द्विकूलामलो
लोके चैकतरः सुराधिपभवो मित्रं सतां कामदः ॥
अष्टाशीतिसखो विपक्षदमनः सङ्ग्रामसिद्धिप्रदो
विभ्राड् वस्तुषु लिङ्गमानसमितो दिव्यः सदा नोऽवतात् ॥३२॥
इत्थं मद्दर्शनं लब्ध्वा नत्वा स्तुत्वाप्यजादयः । वरं च प्रार्थयामासुर्मत्तः सिद्धयष्टकं धरे ! ॥३३॥
लोकोत्पत्तिश्च तद्रक्षा प्रलयश्च पृथक् पृथक् । यथाधिकारिलोकेषु यथा येन शुभाशुभम् ॥३४॥
तैरेवाङ्गीकृतं भद्रे ! त्रैलोक्यस्थैर्ममाज्ञया । पुनर्मामूचुरेवं ते देवा लोकहिताय वै ॥३५॥

---

पर्वतहरूको राजा हिमालय देवताहरूको उत्तम धाम हो र माछापुछ्रे नाम गरेको हिमालयको टाकुरा निश्चय नै वैकुण्ठजस्तै पवित्र छ। नर नारायण नाम गरेका २ जना उत्तम ऋषिहरू माछापुच्छ्रेको शिखरमा रहनुभएको छ। ती दुईमा एकजना नारायण ऋषि काला वर्णका हुनुहुन्छ। उहाँको गालाको पसिनाबाट उत्पन्न भएकी नदी काली गण्डकी ब्रह्माका लागि पनि अतिदुर्लभ मानिएकी छन्। कालीगण्डकी मुक्तिक्षेत्र आदि तीर्थहरूसँग मिलेर बगेकी छन् ॥२२-२४॥

हे पृथिवी ! मेरो यो देवघाट क्षेत्रमा यी नदीहरूको मिलन हुन्छ। यहाँ नै महाबुद्धिमान् वशिष्ठ ऋषिले परम तप, सयअश्वमेध यज्ञ, ठूलो वैभव फैलाएर अनेकौं महादान र पर्वपर्वमा श्राद्ध पनि गरेका थिए। हे महादेवि ! त्यसपछि ब्रह्माजीका छोरा सबै मनु, देवता र दैत्यहरू आकाशमा उड्नेहरू र पृथिवीमा घुम्नेहरू, ७ पातालहरूमा रहेका चराचरहरू सबैले मेरो दर्शन पाउने इच्छा गरेर यस क्षेत्रमा ठूलो सम्पत्ति खर्च गरेर यज्ञ आदि कर्महरू गरेका थिए ॥२५-२८॥

म कलाहरूभन्दा पर भएर पनि हजारौं कलाहरूका साथ तिनीहरूका माझमा प्रकट भएँ र तिनीहरूलाई वर माग भनें। त्यसपछि मेरा तेज पराक्रमले वैलाएका विचित्र आकारका सबै देवताहरूले मेरो दृष्टिले गर्दा चकित भएर मलाई प्रणाम गरे। तिनीहरूले अनेकौं मुखहरूका माध्यमबाट निस्केका यौटै छन्द र स्वरूप भएका र गहिरो अर्थ भएका वाणीद्वारा मेरा नानाप्रकारका रूपहरूलाई नमस्कार गरे ॥२९-३१॥

जन्मनु, रहनु, बदलिनु, बढ्नु, घट्नु र नाश हुनु जस्ता भावहरूमा रहेका, धेरैजसो ब्रह्मा आदि ५ देवताहरूको रूप लिने, ऋक्आदि ४ वेदहरूको सीमानामा रहने, ब्रह्मा आदि ३ देवताका रूपमा पनि स्थिर रहने, प्रकृति र पुरुषमा केन्द्रित भएर पनि लोकमा एकमात्र (निर्गुण) अनुभव गरिने, सज्जनका मित्र ,इच्छाएको दिने , ८८ हजार मुनिहरूका साथी, सबैलाई जितेर युद्धमा सिद्धि दिने, सबैमा चम्किला, शरीरअनुसार शक्ति देखाउने, अलौकिक व्यापक विष्णुले हाम्रो रक्षा गर्नुहुनेछ ॥३२॥

हे पृथिवी ! यसप्रकार ब्रह्मा आदि देवताहरूले मेरो दर्शन पाएर नमस्कार र स्तुति गरेर आठ सिद्धिहरूको वर मागे। अधिकारी अनुसार जसद्वारा लोकमा शुभ र अशुभ कर्महरूको सृष्टि हुन्छ, त्यसपकारका लोकको उत्पत्ति लोकपालन र लोकसंहार गर्न सक्ने अलग अलग वर ब्रह्मा आदि देवताहरूले याचना गरे ॥३३-३४॥

हे कल्याणी ! मेरो आज्ञाअनुसार तीन लोकमा रहेका ब्रह्मा आदि देवताहरूले पूर्वोक्त वर स्वीकार गरे। संसारको कल्याणका लागि फेरि देवताहरूले मलाई यसप्रकार निवेदन गरे –

अत्र यागा अनन्ताश्च व्रतानि जगतां विभो ! अतः प्रयागसंज्ञश्च ततो भवति तत्सदा ॥३६॥
सान्निध्यं कुरु क्षेत्रेऽस्मिन् सर्वदा वरदो भव। वयमप्यत्र तिष्ठामस्त्वत्पदाम्बुसुधोत्सुकाः ॥३७॥
तेषां तद्वचनं श्रुत्वा भक्तवात्सल्यतो धरे ! तदोक्तं च मया सम्यक् शृणु लोकहितं वचः ॥३८॥

श्रीविष्णुरुवाच

सम्भेदे गण्डकीनद्योस्तिष्ठामि प्राङ्मुखः सदा। शिवः प्रत्यङ्मुखो भूत्वा रक्षायै वर्तते सुराः ॥३९॥
अतो हरिहरक्षेत्रमुच्यते लोकविश्रुतम्। दर्शनात् स्पर्शनात् स्नानाल्लभ्यते वाञ्छितं फलम् ॥४०॥
दृष्ट्वा जन्मशतं पापं पीत्वा जन्मशतोद्भवम्। स्नात्वा जन्मशतं पापं गण्डकी हरति ध्रुवम् ॥४१॥
मत्क्षेत्रे देवघट्टेऽस्मिन् यः स्नायात् पापकृन्नरः। ब्रह्महत्यादिकैः पापैर्मुच्यते नात्र संशयः ॥४२॥
प्रयागेऽस्मिन् मम क्षेत्रे यः स्नायात् पापवर्जितः। अश्वमेधफलं भुक्त्वा वैकुण्ठं स वसेन्नरः ॥४३॥
मत्क्षेत्रे यो नरः स्नात्वा कुर्याद् देवार्चनं सुधीः। राजसूयफलं भुक्त्वा देवलोके महीयते ॥४४॥
मम क्षेत्रे नरः स्नात्वा विधिवच्छ्राद्धमाचरेत्। पितॄनुद्धृत्य नरकाद् वैकुण्ठं नयते ध्रुवम् ॥४५॥
मत्क्षेत्रे माषमात्रञ्च हेमं वेदविदे नरः।दद्याद् हेमगिरौ हेममन्दिरे तिष्ठति ध्रुवम् ॥४६॥
गां दद्याद् यो मम क्षेत्रे विधिवद् वेदवादिने। स्थित्वा गोलोकके कल्पं पुनर्वैकुण्ठमाव्रजेत् ॥४७॥
मत्क्षेत्रे यो नरो दद्याद् वस्त्रं धान्यञ्च प्राणिने। अक्षय्यं लभते पुण्यं विष्णुलोके महीयते ॥४८॥
मत्क्षेत्रे यो नरो धीमान् महादानानि दास्यति। स्थित्वा स्वर्गेषु कल्पान्ते चक्रवर्ती भवेत् क्षितौ ॥४९॥
तुलापुरुषदानञ्च गोशतं कनकाचलम्। भूमिदानञ्च यज्ञेषु राजसूयादिकेषु च ॥५०॥
कृत्वा दानान्यनेकानि विष्णुसालोक्यमाप्नुयात्। महाव्रतञ्च यः कुर्यान्मम क्षेत्रे च भो सुराः ॥५१॥
द्विपरार्द्धावसानेषु स्थित्वा च ब्रह्मणोऽन्तिके। पुनः सप्तर्षितां प्राप्य कृत्वा कर्माणि कोटिशः ॥५२॥
वेदोक्तविधिमार्गेण विष्णुसामीप्यमाप्नुयात्। महत्तपश्च यः कुर्यान् मम क्षेत्रे च भो सुराः ॥५३॥
असंख्यकालपर्यन्तं स्थित्वा च ध्रुवमण्डलम्। ध्रुवेण धर्मणा सिद्धो विष्णुसामीप्यमाप्नुयात् ॥५४॥

---

हे परमात्मा ! यहाँ संसारका अनेक यज्ञ र व्रतहरू होऊन्, यसकारण यो क्षेत्र सधैँ प्रयाग नामले विख्यात होस्। यस क्षेत्रमा सधैँ हजुर नजिक रहनुहोस् र वरदाता हुनुहोस्। हामीहरू पनि हजुरका चरणकमलको अमृत चाहेर यहाँ नै बस्छौँ। हे पृथिवी ! ती देवताहरूको यो वचन सुनेर भक्तहरूलाई प्रेम गर्ने स्वभावका कारण त्यतिखेर लोकहरूको हितकर जुन वचन मैले उनीहरूलाई दिएँ, त्यो राम्ररी सुन ॥३६-३८॥

श्रीविष्णुले भन्नुभयो – हे देवताहरू ! गण्डकीनदीहरूको सङ्गम देवघाटमा म सधैँ पूर्व फर्केर बस्छु र लोकरक्षाका लागि शिव सधैँ पश्चिम गरेर बस्नुहुन्छ। यसैले यो संसारमा हरिहरक्षेत्रको नामबाट प्रसिद्ध हुनेछ र दर्शन, स्पर्शन र स्नानले इच्छाएको फल पाइनेछ। गण्डकीनदीले दर्शन गर्दा, जल पिउँदा, स्नान गर्दा पनि सधैँ सय जन्मको पापहरण गर्छिन्। जुन पापी मानिसले मेरो यो प्यारो क्षेत्र देवघाटमा स्नान गर्छ, त्यो ब्रह्महत्या आदि पापहरूबाट मुक्त हुन्छ, यसमा कुनै शङ्का छैन। जुन मानिस मेरो यो क्षेत्र प्रयागमा नुहाउँछ, त्यसका पाप नाश हुन्छन् र त्यो अश्वमेध यज्ञको फल भोगेर वैकुण्ठमा बस्छ। जुन मानिसले मेरो क्षेत्र देवघाटमा नुहाएर देवताहरूको पूजा गर्छ, त्यो राजसूययज्ञको फल भोगेर देवलोकमा सम्मानित हुन्छ ॥३९-४४॥

मेरो क्षेत्र देवघाटमा नुहाएर विधिपूर्वक श्राद्ध गर्ने मानिसले आफ्ना पितृहरूलाई नरकबाट उद्धार गरेर निश्चय नै वैकुण्ठमा पुऱ्याउँछ। जुन मानिसले मेरो क्षेत्र देवघाटमा वेदका ज्ञाता मानिसलाई १ मासा बराबर भए पनि सुन दान दिन्छ, त्यो मानिस निश्चय नै सुमेरु पर्वतमा सुनको मन्दिरमा बस्छ। जुन मानिसले यस क्षेत्रमा वेद जान्ने मानिसलाई विधिअनुसार गाई दान गर्छ, त्यो मानिस कल्पपर्यन्त गोलोकमा बसेर वैकुण्ठलोकमा आउँछ। जुन मानिसले मेरो यस क्षेत्रमा प्राणीलाई वस्त्र र धान दिन्छ, त्यस मानिसले अक्षय पुण्य पाउँछ र विष्णुलोकमा सम्मानित हुन्छ। जुन बुद्धिमान् मानिसले यस क्षेत्रमा महादान गर्छ, त्यो मानिस स्वर्गमा बसेर कल्पको अन्त्यमा पृथिवीमा चक्रवर्ती राजा हुनेछ ॥४५-४९॥

मानिस तुलापुरुष दान, सय गाईदान, सुनको पर्वतदान, राजसूय आदि यज्ञहरूमा भूमिदान आदि अनेकौँ दान गरेर भगवान् विष्णुको लोकमा बस्न पाउँछ। हे देवताहरू ! जुन मानिसले मेरो यस क्षेत्रमा महाव्रत गर्छ, त्यो दुई परार्द्ध सिद्धिइञ्जेल ब्रह्माको नजिक बसेर फेरि सप्तर्षि भै वैदिक विधिअनुसार करोडौँ कर्म गरेर विष्णुको समीपमा बस्न पाउँछ। हे देवताहरू ! जसले मेरो यस क्षेत्रमा ठूलो तप गर्छ त्यो असंख्य समयसम्म ध्रुवमण्डलमा स्थिर धर्मको पालन गरी विष्णुको समीपमा पुग्छ ॥५०-५४॥

महायोगञ्च यः कुर्याद् देवघट्टे च भो सुराः। अव्याहतगतिः सिद्धः कामरूपो विमत्सरः ॥५५॥
ब्रह्माण्डानेकपद्मेषु षट्पदः पदवर्जितः। ब्रह्मैकरसमार्गेण विष्णुसायुज्यमाप्नुयात् ॥५६॥
मरणाज्जननं नैव काश्यां वै शिवसद्मनि। जननाज्जननं नैव गण्डक्यां मम वेश्मनि ॥५७॥
वपुः पतति गण्डक्यां यदीयं पाञ्चभौतिकम्। तस्य स्वर्गे भवेज्जन्म यत्र मृत्युभयं न हि ॥५८॥
शालग्रामशिलारूपं पार्थिवांशो न संशयः। शालग्रामीजलैकत्वं जायते शाम्बरांशकम् ॥५९॥
तैजसं तेजसां राशौ योगं प्राप्नोति निश्चितम्। शैशुमारे महाचक्रे प्राणसङ्घस्तथैव च ॥६०॥
वियदंशो महाकाशे तथैवात्मा परात्मनि। इत्थञ्च षड्विधं जन्म जायते चापुनर्भवम् ॥६१॥
त्रिवेण्यां मरणान्मुक्तिर्देवघट्टे च कर्मभिः। योगेन मुक्तिक्षेत्रे स्यात् सर्वथा गण्डकीजले ॥६२॥

श्रीवराह उवाच

इत्युक्त्वा तान् वरान् तेभ्यो दत्वा चान्तर्दधे हरिः। ब्रह्मादयोऽपि ज्ञात्वेत्थं नदीनां परमां नदीम् ॥६३॥
क्षेत्राणां परमं क्षेत्रं कृत्वा योगादिकाः क्रियाः। क्षेत्रप्रभावात्ते सर्वे लेभिरे वाञ्छितं फलम् ॥६४॥
जग्मुर्ब्रह्मादयो देवा भक्त्या लब्धपदादिभिः। खगोले च खगाः सर्वे शैशुमारे ध्रुवादयः ॥६५॥
आग्नीध्रप्रमुखाः सर्वे द्वीपेषु च ममाज्ञया। पातालेषु तथा शेषादयो दैत्याश्च वै ययुः ॥६६॥
इत्थमादिप्रयागाख्यमादिभूतं मम प्रियम्। भुक्तिमुक्तिप्रदं नृणां मम सायुज्यदायकम् ॥६७॥
देवघट्टे मृता ये च जन्तवः कालचोदिताः। चतुर्भुजाः स्युर्वैकुण्ठे तु पीताम्बरधारिणः ॥६८॥
मज्जागतानि पापानि बहुजन्मार्जितानि च। प्रयागनामस्मरणात् क्षीयन्ते निर्विकल्पकम् ॥६९॥
ये च निर्मत्सराः शान्ता निर्ममा मत्परा धरे। दृष्टश्रुताभ्यामन्यत्र योगिनो मत्पदे गताः ॥७०॥
माहात्म्यं देवघट्टस्य यः पठेच्छृणुयादपि। स लभेदीप्सितं चार्थं हरिसायुज्यमाप्नुयात् ॥७१॥

इतिश्रीकश्यपकुलतिलककाश्यपचरणोपासककश्यपगोत्रीयश्रीकाशीरामविरचिते श्रीगण्डकीमाहात्म्ये आदिप्रयागवर्णनं नाम सप्तमोऽध्यायः ॥

---

हे देवताहरू ! जुन मानिसले देवघाटमा महायोग गर्दछ, त्यो गति नरोकिने, इच्छानुसार रूप फेर्ने, रीस नभएको सिद्ध हुनेछ र ब्रह्माण्डरूपी कमलहरूमा पदविनाको भँवरा भै ब्रह्मको आस्वादको पद्धतिबाट विष्णुमा एकरूप हुनेछ। शिवजीको धाम काशीमा मर्दा जन्म नै हुँदैन भने मेरो धाम गण्डकीक्षेत्र देवघाटमा जन्मदा मात्र पनि फेरि जन्मनु नै पर्दैन। जसको पाञ्चभौतिक शरीर गण्डकीमा खस्छ, त्यसको त्यस्तो स्वर्गमा जन्म हुन्छ जहाँ मृत्युको डर हुँदैन ॥५५-५८॥

गण्डकीमा शरीर खस्नेको शरीरको पार्थिवांश शालग्रामशिलाका रूपमा जन्म हुन्छ भन्ने कुरामा कुनै शङ्का छैन। शालग्राम रहेको जलमा मिल्न जाँदा जलको अंशमा जन्म हुन्छ। उसको तेजको स्वरूप निश्चय नै तेजको राशिमा मिल्छ। शरीरवर्ती अकाशको अंश महाकाशमा विलीन हुन्छ। त्यसरी नै आत्मा परमात्मामा मिल्छ। यसरी उसको सांसारिक जन्मविनाको ६ प्रकारको जन्मले सबै प्राणहरू शिशुमार महाचक्रमा विलीन हुन्छन्। त्रिवेणीमा मृत्यु हुँदा मुक्ति प्राप्त हुन्छ, देवघाटमा असल कर्म गरेर मुक्ति हुन्छ, मुक्तिक्षेत्रमा योगसाधनाले मुक्ति हुन्छ भने गण्डकीको जलमा सधैँ मुक्ति हुन्छ ॥५९-६२॥

श्रीवराहले भन्नुभयो – यसरी उनीहरूलाई उपदेश एवं वर दिएर भगवान् हरि अदृश्य हुनुभयो। ब्रह्मा आदि सबै देवताहरूले पनि यसरी नदीहरूमा श्रेष्ठ नदी र क्षेत्रहरूमा उत्तम क्षेत्र हो भन्ने कुरा बुझेर योगसाधना आदि क्रियाहरू गरी क्षेत्रका प्रभावले गर्दा चिताएको फल प्राप्त गरे ॥६३-६४॥

भगवान्को भक्तिद्वारा पद प्राप्त गरेका ब्रह्मा आदि देवताहरू आ-आफ्ना पदमा गए भने मेरो आज्ञानुसार सबै पक्षीहरू आकाशमा, ध्रुव आदि ताराहरू शिशुमारचक्रमा, सबै आग्नीध्र आदि राजाहरू आ-आफ्ना द्वीपहरूमा, शेष आदि नागहरू र दैत्यहरू पतालमा नै गए। यसप्रकार मेरो प्यारो पहिलो आदिप्रयाग नाम गरेको क्षेत्र मनुष्यहरूको भोग र मोक्षका साथै मेरो स्वरूप प्राप्ति गराउने पनि छ ॥६५-६७॥

कालले प्रेरणा दिएका जो प्राणीहरू देवघाटमा मर्छन्, ती वैकुण्ठलोकमा गएर ४ हात भएका र पीताम्बर धारण गर्ने विष्णु बन्दछन्। बोसोबाट उत्पन्न भएका र धेरै जन्ममा आर्जन गरिएका सबै पापहरूआदिप्रयागको नाम सम्झने बित्तिकै निश्चय नै नाशमा प्राप्त हुन्छन्। हे पृथिवी ! जो डाह नभएका, शान्त, अहंकार नभएका र ममा समर्पित हुन्छन्, ती योगीहरू देखिने र सुनिने पदार्थहरू भन्दा पर रहेको मेरो परम पदमा प्राप्त हुन्छन्। जुन मानिस देवघाटको माहात्म्य पढ्दछ वा सुन्दछ त्यसले चिताएको लक्ष्य प्राप्त गरी हरिको स्वरूपमा प्राप्त हुनेछ ॥६८-७१॥

यसप्रकार कश्यपकुलका श्रेष्ठ काश्यपऋषिको चरणको उपासना गर्ने काश्यपगोत्रीय श्रीकाशीरामद्वारा रचित गण्डकीमाहात्म्यमा सातौं अध्याय परिपूर्ण भयो ॥७॥

# आठौं अध्याय : त्रिवेणी वर्णन

श्रीभगवच्छर्मोवाच

त्रिवेणीति प्रयागे च प्रशंसन्ति मनीषिणः। गङ्गा च यमुना तत्र गुप्ता चैव सरस्वती ॥१॥
त्रिवेणी तिसृभिः ख्याता देवानामपि दुर्लभा। कथञ्च गण्डकीक्षेत्रे त्रिवेणीत्वं प्रकीर्तितम् ॥२॥
एतन्मे संशयं विप्र ! छिन्धि शास्त्रप्रमाणतः। के देवाः कानि तीर्थानि किं फलं तत्र चोच्यताम् ॥३॥

श्रीकाशीराम उवाच

प्रश्नोऽयञ्च पुरा जातो वराहे च धरामर ! धरावराहसंवादे तच्छृणुष्व वदामि ते ॥४॥

धरण्युवाच

प्रयागे या त्रिवेणीति यत्र देवो महेश्वरः। शूलटङ्क इति ख्यातः सोमेश इति चापरः ॥५॥
वेणीमाधवनाम्ना च यत्र विष्णुः स्वयं स्थितः। गङ्गा च यमुना तत्र सरस्वत्यपरा नदी ॥६॥
सर्वेषाञ्चैव तीर्थानां क्षेत्राणां सरसामपि। श्रेष्ठत्वात्तीर्थराजेति विख्यातं भुक्तिमुक्तिदम् ॥७॥
त्रिवेणी तत्र विख्याता किमपूर्वां प्रशंससि ! एतद् गुह्यतमं प्रोक्तं त्वया विष्णो ! प्रसादतः ॥८॥
कथञ्च गण्डकीक्षेत्रे त्रिवेणीत्वं प्रकीर्तितम् ! के देवाः कानि तीर्थानि किं फलं तत्र का गतिः ? ॥९॥
मय्यनुक्रोशबुद्धया च लोकानां हितकाम्यया। एतन्मे संशयं छिन्धि सर्वज्ञस्त्वं जगत्प्रभो ॥१०॥

श्रीवराह उवाच

शृणु देवि ! धरे ! भद्रं यद् गुह्यं परिपृच्छसि। त्रिवेण्यौ मे प्रिये चोभे विशेषाञ्च तयोः शृणु ॥११॥
षट्त्रिंशच्च सहस्राणि कल्पाः सन्ति व्यवस्थिताः। तत्रादौ प्रथमे कल्पे मानसाख्ये वसुन्धरे ! ॥१२॥
नाभिपद्मादभूद् ब्रह्मा पुरुषस्य चतुर्मुखः। तस्यावयवतो जाताः कुमाराः सनकादयः ॥१३॥
ब्रह्मणो हृदयाद् धर्मो जज्ञे सर्वजनाश्रयः। तस्मान्मूर्त्याञ्च जज्ञाते नरनारायणावृषी ॥१४॥
रक्षायै जगतां तौ तु तपमानौ हिमालये। तयोर्गण्डस्थलस्वेदसम्भूते देवदुर्लभे ॥१५॥
जज्ञाते सरितां क्षेष्ठे गण्डक्यौ वसुधे ध्रुवम्। सम्भेदस्तु तयोरेवं देवघट्टमिदं स्मृतम् ॥१६॥

---

भगवत्शर्माले भने – विद्वान्‌हरू प्रयागलाई त्रिवेणी भनेर प्रशंसा गर्छन्। त्यहाँ गङ्गा, यमुना र गुप्त रूपमा रहेकी सरस्वती गरी ३ नदीहरू छन्। तीन नदीहरूका कारणले देवताहरूका लागि पनि दुर्लभ त्रिवेणी प्रसिद्ध छन् भने गण्डकी क्षेत्रमा कसरी त्रिवेणी तीन नदीको सङ्गम मानियो ? हे ब्राह्मण ! शास्त्रहरूको प्रमाणद्वारा मेरो यो शङ्का निवारण गर्नुहोस्। त्रिवेणी क्षेत्रमा कुन कुन देवताहरू कुन कुन तीर्थ छन् र त्यहाँको के फल छ ? भन्नुहोस् ॥१–३॥

काशीरामले भने – हे ब्राह्मण ! पहिले पृथिवी र वराहको संवादमा पृथिवीले वराहसँग यही प्रश्न गरेकी थिइन्। त्यस प्रश्नको उत्तर तपाईंलाई बताउँछु, सुन्नुहोस् ॥४॥

पृथिवीले भनिन् – त्रिवेणी भनिने प्रयागमा भगवान् शिव शूलटंक र सोमेश नामले प्रसिद्ध हुनुहुन्छ। त्यसै प्रयागमा भगवान् विष्णु वेणीमाधव नामले रहनुभएको छ। त्यहाँ गङ्गा, यमुना र सरस्वती नदीहरू रहेका छन्। सबै तीर्थक्षेत्र र सरोवरहरूमा पनि श्रेष्ठ भएको हुँदा नै त्रिवेणी भुक्ति एवं मोक्ष दुबै दिने तीर्थराज भनेर प्रसिद्ध छ ॥५–७॥

हे विष्णु ! प्रयागमा त्रिवेणी प्रसिद्ध नै छन् भने कुन अपूर्व त्रिवेणीको प्रशंसा गर्दै हुनुहुन्छ ? हजुरले जुन गोप्य त्रिवेणीको कुरा गर्नुहुन्छ, ती त्रिवेणी गण्डकी क्षेत्रमा कसरी प्रकट भइन् ? गण्डकीक्षेत्रको त्रिवेणीमा कुन कुन देवताहरू छन् कुन कुन तीर्थहरू छन् र त्यस त्रिवेणीको के फल र के गति छ ? । हे जगत्का स्वामी ! ममाथि कृपा र मेरो हित गर्ने इच्छाले तपाईंले मेरो शङ्का हटाउनुहोस् किनकि तपाईंसर्वज्ञ हुनुहुन्छ ॥८–१०॥

श्रीवराहले भन्नुभयो – हे देवी पृथिवी ! जो गोप्य कुरा सोध्यौ त्यसको मङ्गलमय उत्तर सुन। दुबै त्रिवेणीहरू मेरो लागि प्यारा छन्। तिनीहरूको अन्तर सुन। छत्तीस हजार कल्पहरूको व्यवस्था गरिएको छ। हे पृथिवी ! मानस नाम गरेको आदिकल्पमा परमपुरुष विष्णुका नाभिकमलबाट चारमुख भएका ब्रह्माजी पैदा भए, उनका शरीरबाट सनक आदि ४ कुमारहरू पैदा भएका थिए ॥११–१३॥

ब्रह्माजीको हृदयबाट सबैका आश्रय, धर्म पैदा भए। धर्मकी पत्नी मूर्तिमा नर र नारायण नाम गरेका दुई ऋषिहरूपै दा भएका थिए। नर र नारायण जगत्को रक्षाका लागि हिमालयमा तप गरिरहेका थिए। हे पृथिवी ! तिनीहरूको गालाको पसिनाबाट देवताहरूका लागि पनि दुर्लभ दुई श्रेष्ठ गण्डकी नदीहरूको उत्पत्ति भयो र तिनीहरूको सङ्गम भएको स्थललाई नै देवघाट भनियो ॥१४–१६॥

चम्पारण्यस्थले रम्ये गण्डकीतटमण्डिते। तत्र स्थितं महालिङ्गं त्रिजलेश्वरसंज्ञितम् ॥१७॥
भुक्तिमुक्तिप्रदं देवि ! दर्शनादघनाशनम्। ज्ञात्वा क्षेत्रप्रभावञ्च देवास्तत्र समागताः ॥१८॥
तत्रादौ मानसे कल्पे तपश्चक्रुः समाहिताः। तेषां प्रभावात् सञ्जाता देविका नाम निम्नगा ॥१९॥
नियमार्थञ्च देवानां गण्डक्यां मिलिता शुभा। पुलस्त्यपुलहौ पूर्वं तेपाते परमं तपः ॥२०॥
तौ च सृष्टिविधानार्थं कृत्वाश्रमपदं पृथक्। सृष्टेर्विधानसामर्थ्यं तत्र लब्ध ततः परम्॥ २१॥
ततोऽभूद्रुद्रतनया पुण्यदा सरितां वरा। गण्डक्यां मिलिता सापि त्रिवेणी गण्डकीत्यभूत् ॥२२॥
धरे ! जानीहि तत्क्षेत्रं योजनं परमार्चितम्। इत्थमादित्रिवेण्येषा भुक्तिमुक्तिप्रदा ध्रुवा ॥२३॥
सा च त्रेतायुगे भूत्वा षट्सहस्रावधिः कलेः। तिष्ठत्यचञ्चला नृणां भुक्तिमुक्तिप्रदा स्मृता ॥२४॥
अत्र त्रिवेण्यौ तुल्ये द्वे स्वर्गमोक्षप्रदे धरे ! विशेषं कालमात्रञ्च फलञ्च परमं तयोः ॥२५॥
शालग्रामगिरिस्तत्र देवानां परमालयः। स गिरिर्मम रूपं वै भुक्तिमुक्तिप्रदं नृणाम् ॥२६॥
तस्मिन् शिलाः समग्रास्तु मत्स्वरूपा न संशयः। पूजनीयाः प्रयत्नेन किं पुनश्चक्रलाञ्छिताः ? ॥२७॥
लिङ्गरूपो हरस्तत्र देवो देवालयो गिरिः। शिवनाभशिलास्तत्र चक्रनाभास्तथापराः ॥२८॥
शिवरूपो गिरिस्तत्र सर्वपापक्षयङ्करः। गुरुशापगतश्रीकः सोमस्तत्र जगाम ह ॥२९॥
स्वनाम्ना लिङ्गं संस्थाप्य सहस्राब्दं ततापं च। तल्लिङ्गात् प्रकटो भूत्वा शम्भुः शक्तिसमन्वितः ॥३०॥
उवाचेदं वरं ब्रूहि यत्ते मनसि वर्तते । श्रुत्वैतदमृतं वाक्यं शम्भोः सोमोऽतिहर्षितः ॥३१॥
उन्मील्य नयने शीघ्रं प्राञ्जलिः प्रणनाम च। तुष्टाव वृषभारूढं शिवं सर्वगणावृतम् ॥३२॥
नमः शिवाय शान्ताय शिवावामाङ्गधारिणे। त्र्यम्बकाय त्रिनेत्राय त्रिलोकाधिपते ! नमः ॥३३॥
त्र्यक्षराय त्रिरूपाय नमस्ते त्रिपुरारये। त्रयीमयाय तुर्याय नमस्ते चाष्टमूर्तये ॥३४॥
नागयज्ञोपवीताय जटामुकुटिने नमः। गङ्गाधराय ते नौमि गिरिकार्मुकधारिणे ॥३५॥

---

हे पृथिवी ! गण्डकीको तीरले सुहाएको सुन्दर चम्पारण्य नाम गरेको ठाउँमा भोग र मोक्ष दिने र दर्शनमात्रले पापनाश गर्ने त्रिजलेश्वर नाम गरेको ठूलो शिवलिङ्ग रहेको छ। यस क्षेत्रको प्रभाव बुझेर देवताहरू त्यहाँ आए। मानस नामक आदिकल्पमा देवताहरूले समाधि लगाएर तप गर्दा तिनीहरूको प्रभावबाट देविका नाम गरेकी नदी उत्पन्न भइन्। पवित्र देविका नदी देवताहरूको नियमका लागि गण्डकीमा समाहित भइन्, त्यस मङ्गलस्थमा पुलस्त्य र पुलह ऋषिले पहिले ठूलो तपस्या गरेका थिए। ती ऋषिले सृष्टिविधानका लागि अलग आश्रमपद बनाएर तप गरे। त्यसपछि सृष्टिविधानको सामर्थ्य पनि प्राप्त गरेका थिए। त्यसपछि पवित्र र नदीहरूमा श्रेष्ठ रुद्रतनया रुद्रगङ्गा उत्पन्न भइन् र गण्डकीमा समाहित भइन्। यसरी देविका र रुद्रतनयाको सङ्गम हुँदा गण्डकी त्रिवेणी नामले प्रसिद्ध भइन् ॥१७-२२॥

हे पृथिवी ! त्यो क्षेत्र ४ कोशपर्यन्त ज्यादै पवित्र छ। यसरी यो आदित्रिवेणी निश्चित नै भोग र मोक्ष दुबैप्रदान गर्न समर्थ छ। आदित्रिवेणी त्रेतायुगमा प्रकट भएर कलिको ६,००० वर्षसम्म स्थिर रहनेछन् र तिनले मानिसहरूलाई भोग र माक्ष दुबै दिनेछिन् भनिएको छ। यस पृथिवीका दुबै त्रिवेणी बराबर भोग र मोक्ष प्रदान गर्न समर्थ छन्। समयमात्र फरक छ, तर दुबैको फल उत्तम छ ॥२३-२५॥

त्यस पवित्रस्थलमा देवताहरूको उत्तम आश्रय भएको शालग्रामपर्वत छ। मानिसहरूका लागि भोग र मोक्ष दिने त्यो पर्वत मेरो नै स्वरूप हो ॥२६॥ यहाँ रहेका सारा शिलाहरू मेरा स्वरूप हुन्, यसमा शङ्का छैन। ती शिला यत्नपूर्वक पूजा गर्न लायक छन्। चक्रचिन्ह भएका शिलाको महत्वबारे के भन्न सकिन्छ ? ॥२७॥ यस शालग्राम पर्वतमा लिंगरूपमा सोमेश्वर शिव र शालग्रामका रूपमा विष्णु रहनुभएको छ। त्यसैले त्यहाँ कुनै शिवनाभ शिलाहरू छन् भने कुनै चक्रनाभ शिलाहरू छन्। त्यो शिव-शालग्राम पर्वत नै सबै पापनाश गर्ने शिवको स्वरूप हो। देवगुरु बृहस्पतिका सरापले तेज नष्ट भएका चन्द्रमाले त्यहाँ गएर आफ्ना नामबाट सोमेश्वर लिङ्ग स्थापना गरेर एक हजार वर्षसम्म तपस्या गरे। त्यस लिङ्गबाट शक्तिका साथ प्रकट भएर शिवले भन्नुभयो - तिम्रो मनमा जे छ, त्यो वर माग। शिवको यो मीठो बोली सुनेर चन्द्रमा अत्यन्त खुसी भए ॥२६-३१॥

चन्द्रमाले आँखा खोलेर अञ्जलि बाँधेर तुरुन्त शिवलाई नमस्कार गरे र गणहरू साथमा लिनुभएका र साँढेमा सवार हुनुभएका शिवको स्तुति गरे। हे त्रिलोकीका स्वामी ! पार्वतीलाई देब्रे अगंमा धारण गर्नुहुने शिवलाई नमस्कार गर्दछु। तीन मुख र तीन आँखाहरूले सुहाउनुभएका शिवलाई नमस्कार छ। ॐकार स्वरूप, तीन देवताको रूप लिने र त्रिपुरका शत्रु शिवलाई नमस्कार गर्दछु। ऋक, यजु र सामस्वरूप, तुरीय अवस्थामा रहने र सूर्य, जल, पृथिवी, अग्नि आदि ८ रूप मानिएका तपाईंलाई नमस्कार गर्दछु। नागलाई जनैका रूपमा लगाउनुहुने र जयको मुकुट धारण गर्नुहुने शिवजीलाई नमस्कार गर्दछु। गङ्गाधारण गर्ने र पर्वतलाई धनु बनाई धारण गर्नुहुने हजुरलाई नमस्कार गर्दछु ॥३२-३५॥

दिगम्बराय देवाय गजचर्माम्बराय च। नमस्ते चन्द्रभालाय शूलखट्वाङ्गपाणये ॥३६॥
नमस्ते वृषरूढाय प्रमथाधिप ! ते नमः। नमः कुवेरमित्राय कुमारगुरवे नमः ॥३७॥
कामारये नमो नीलकण्ठाय विषभक्षिणे। गिरीशाय नमस्तुभ्यं कैलासवासिने नमः ॥३८॥
निर्गुणाय गुणाधारमूर्तये विश्वरूपिणे। विश्वकर्त्रे विश्वभर्त्रे विश्वहन्त्रे नमो नमः ॥३९॥
नमो वेदान्तवेद्याय ब्रह्मादिवेदनाय च। नमो ब्रह्मस्वरूपाय लिङ्गरूपाय ते नमः ॥४०॥
सर्वाय सर्वद्रव्याय नमः कालस्वरूपिणे। कोटिकल्पान्तक्रीडाय कोटिकल्पाल्पक्रीडिने ॥४१॥
खगोलमण्डपे लीलाताण्डवोल्लासया धिया। भिदे ब्रह्माण्डभाण्डानामर्भकाय नमोऽस्तु ते ॥४२॥
स्तुत्वेत्थं वसुधे ! सोमः पुनर्वचनमब्रवीत्। किं ब्रवीमि वरं शम्भो ! वरस्त्वद्दर्शनावधिः ॥४३॥
त्वमेव प्रकृतिः पुंसां पुरुषोऽपि निरामयः। अन्तर्गतो हि भूतानां यथेच्छसि तथा कुरु ॥४४॥
श्रुत्वा सोमोदितं शम्भुर्भक्तवत्सलतार्द्रधीः। पस्पर्श पाणिना सोमं परमामृतवर्षिणा ॥४५॥
ततः सोमो बभौ स्वाभिः कलाभिः पूर्ववद्धरे ! तमुवाच पुनः शम्भुर्द्विजराज ! महामते ! ॥४६॥
प्रीतोऽस्मि तपसा स्तुत्या लिङ्गस्थापनकर्मणा। मत्क्षेत्रे परया भक्त्या तव गौरीर्येकताजुषः ॥४७॥
मम प्रीत्या गिरावस्मिन् यो वसेत् पञ्चरात्रकम्। कैलासशिखरे रम्ये निर्भयं स वसेन्नरः ॥४८॥
सकृत् सोमेश्वरं लिङ्गं प्रभुं यो वै समर्चयेत्। स नरो मम सायुज्यं प्राप्नुयान्नात्र संशयः ॥४९॥
स्तुतिमेतां पठेन्नित्यं मद्भक्तः शुद्धचेतसा। स लभेत् परमं ज्ञानं मम लोके महीयते ॥५०॥
त्यजेत् प्राणान् गिरावस्मिन् यः स मुक्तो न संशयः। दत्त्वैतांस्तु वरान् रुद्रस्तस्मिंल्लिङ्गे लयं ययौ ॥५१॥
सोमेशाद्दक्षिणे भागे रावणेन शरेण वै। विद्ध्वाद्रिं वै प्रकटिता जलधाराऽतिपुण्यदा ॥५२॥
बाणगङ्गेति विख्याता या स्नाताप्यघहारिणी। सोमेशात् पूर्वभागे तु रावणस्य तपोवनम् ॥५३॥
यत्र स्थित्वा त्रिरात्रेण तपसः फलमश्नुते। यत्र नृत्येन देवेशस्तुष्टस्तस्मै वरं ददौ ॥५४॥

---

निर्वस्त्र रूपमा रहनुहुने, पवित्र हात्तीको छालालाई वस्त्रका रूपमा धारण गर्ने, शिरमा चन्द्र धारण गर्ने र हातमा त्रिशूल र खट्वाङ्ग धारण गर्ने तपाईं शिवलाई नमस्कार गर्दछु। साँढेमा सवार हुनुभएका र प्रमथगणका स्वामी तपाईंलाई नमस्कार गर्दछु। कुवेरका साथी र कुमारका पिता शिवलाई नमस्कार गर्दछु। कामदेवका शत्रु, विष पान गरेका कारण नीलकण्ठबाट सम्बोधन गरिनुहुने, पर्वतका स्वामी र कैलासका निवासी तपाईंलाई नमस्कार गर्दछु। निर्गुण र सगुण दुबैरूप भएका, विश्वलाई नै आफ्नो स्वरूप बनाउनुहुने, विश्वलाई बनाउने, पालन गर्ने र संहार गर्ने शिवलाई बारम्बार नमस्कार गर्दछु ॥३६–३९॥

वेदान्तले जान्न योग्य र ब्रह्मतत्त्वका ज्ञाता शिवलाई नमस्कार गर्दछु। ब्रह्मस्वरूप र त्यसको लिङ्गकारणस्वरूपतपाईंलाई नमस्कार गर्दछु।सबैको रूप, सबै पदार्थ र कालका पनि रूप मानिनुहुने शिवलाई नमस्कार गर्दछु, करोडौं कल्पसम्म क्रीडा भएका र करोडौं कल्पसम्म क्रीडा गर्ने शिवलाई नमस्कार गर्दछु ॥४१॥ आकाशमण्डपलमा लीलाका साथ ताण्डव गर्दाको रसिलो बुद्धिले ब्रह्माण्डरूप भाँडाहरूको भेदन गर्ने तपाईं बालकरूप शिवलाई नमस्कार गर्दछु ॥४०–४२॥

हे पृथिवी ! यसप्रकार स्तुति गरेर चन्द्रमाले फेरि भने – हे शिव ! म के वर भनौं ? वर तपाईंलाई न देखिञ्जेलसम्म मात्र मागिन्छ। हे शिव ! तपाईं विशुद्ध पुरुष भएर पनि मानिसहरूका लागि प्रकृति हुनुहुन्छ र प्राणीहरूको हृदयमा बस्नुहुन्छ, त्यसैले जे उचित छ त्यही गर्नुहोस्। यसप्रकार चन्द्रमाको बोली सुनेर भक्तका प्रेमले पग्लने भएका भगवान् शङ्करले उत्तम अमृत वर्षाउने आफ्नो हातले चन्द्रमालाई स्पर्श गर्नुभयो ॥४३–४५॥

हे पृथिवी ! त्यसपछि चन्द्रमा पहिले जस्तै आफ्ना कलाहरूले चम्के। फेरि शङ्करले उनलाई भन्नुभयो – हे बुद्धिमान् चन्द्र ! मेरो क्षेत्रमा लिङ्गस्थापनाका साथ गरिएका तपस्या, स्तुति र उत्तम भक्तिद्वारा म गौरीका साथ प्रसन्न छु। जुन मानिस यस पर्वतमा मेरो भक्तिले ५ रातसम्म बस्छ, त्यो मानिस सुन्दर कैलासका टाकुरामा निर्भय भई बस्नेछ। जुन मानिसले एकपल्ट मात्र पनि भगवान् शिवको सोमेश्वरलिङ्गको पूजा गर्छ त्यो मेरो स्वरूपमा प्राप्त हुन्छ, यसमा शङ्का छैन। जुन मेरो भक्तले चन्द्रमाले गरेको यस स्तुतिलाई शुद्धचित्तले सधैं पढ्छ त्यसले उत्तम ज्ञान प्राप्त गर्छ र मेरो लोकमा सम्मानित हुनेछ ॥४६–५०॥

जुन मानिसले यस पर्वतमा प्राणत्याग गर्छ, त्यो मुक्त हुन्छ यसमा शङ्का छैन। यति वर दिएर भगवान् शङ्कर त्यस सोमेश्वर लिङ्गमा लीन हुनुभयो। सोमेश्वर लिङ्गदेखि दक्षिणपट्टि रावणले बाण हानेर पर्वत फोरी प्रकट गराइएकी, ज्यादै पुण्य दिने, नुहाउँदा मात्र पनि पापनाश गर्ने बाणगङ्गा नामले प्रसिद्ध जलधारा (नदी) रहेकी छन्। सोमेश्वरदेखि पूर्वतर्फ रावणको तपोवन छ जहाँ तीन रातसम्म बस्नेले तपस्याको फल पाउँछ। जहाँ रावणको नृत्यकलाबाट खुशी भएका शङ्करले रावणलाई वर दिनुभयो ॥५१–५४॥

तेन रावणनृत्येन प्रख्यातो नर्तनाचलः। तत्र बाणेश्वरं लिङ्गं भुक्तिमुक्तिप्रदं नृणाम् ॥५५॥
स्नात्वा तु बाणगङ्गायां दृष्ट्वा बाणेश्वरं विभुम्। गङ्गास्नाफलं प्राप्य मोदते देववद् दिवि ॥५६॥
तत्र रेवा तपस्तेपे सहस्राब्दं गिरौ धरे ! चित्ते निधाय वै शम्भुं शीर्णपर्णाशिना नदी ॥५७॥
तुष्टस्तस्यै वरं दातुं शङ्करो गणसंयुतः। आविरासीत्तदा रेवां वरं ब्रूहीति चाब्रवीत् ॥५८॥
श्रुत्वा सुधासमं वाक्यमुन्मील्य नयने शुभे। ददर्शासौ शिवं साक्षात् सर्वदेवनमस्कृतम् ॥५९॥
हर्षगद्‌गदवाग् रेवा तुष्टाव वृषभध्वजम्। ॐ नमः सिद्धमव्यक्तमचिन्त्यमधिदैवतम् ॥६०॥
भावाभावस्वरूपाय सर्वद्रव्येषु ते सदा। इति स्तुत्वा शिवं रेवा प्रार्थयामास तं वरम् ॥६१॥
प्रदक्षिणात्रयं कृत्वा पूजयित्वा पुनः पुनः। प्रणम्य शिरसा पादौ पुनरुत्थाय प्राञ्जलिः ॥६२॥

रेवोवाच

यदि देव ! प्रसन्नोऽसि ददासि चिन्तितं वरम्। अहं ते परमा मूर्तिर्मत्पुत्रो भव गर्भजः ॥६३॥

श्रीशिव उवाच

तव पुत्रो भविष्यामि गजाननपुरस्कृतः। लिङ्गरूपेण ते देवि ! सर्वदेवगणैः सह ॥६४॥
सर्वे वयं भविष्यामो लिङ्गचक्राङ्किताः शिलाः। पूजकान् तारयिष्यामः कीर्तिस्ते वितनिष्यति ॥६५॥
इति तस्यै वरं दत्वा शम्भुरन्तर्दधे धरे ! तत्र रेवा प्रसिद्धाऽभूद्रेवाखण्डमतः स्मृतम् ॥६६॥
तपश्चकार तत्रैव शालग्रामगिरौ धरे ! गण्डकी मानसे कल्पे वर्षाणामयुतं ध्रुवम् ॥६७॥
दिव्यं वर्षशतं शीर्णपर्णभक्ष्या तथा पुनः। जलाशना वायुभक्ष्या हृदि विष्णुं विधाय च ॥६८॥
ततो विष्णुः खगारुढो मेघगम्भीरया गिरा। प्रेम्णोवाच प्रसन्नोऽस्मि सऽक्त्या तपसा तव ॥६९॥
वरदोऽहं वरारोहे ! वरं ब्रूहि वरानने ! गण्डकी पुण्डरीकाक्षं पुरो दृष्ट्वा खमण्डले ॥७०॥
दण्डवत् प्रणता भूमौ ब्रह्माण्डभाण्डमण्डनम्। चण्डदोर्दण्डविभ्राजच्चक्रशङ्खादिभिर्युतम् ॥७१॥
कौस्तुभोद्भासितोरस्कं वनमालाविभूषितम्। नत्वा तं स्तोतुमारेभे हर्षाश्रुपूर्णलोचना ॥७२॥

---

रावणको त्यही नाचद्वारा नै त्यो ठाउँ नर्तनाचल (नरपानी) नामले प्रसिद्ध छ। त्यस पर्वतमा मनुष्यहरूको भोग र मोक्ष दुबै दिने बाणेश्वरलिङ्ग रहेको छ। बाणगङ्गामा स्नान गरेर भगवान् बाणेश्वरको दर्शन गर्ने मानिसले गङ्गास्नानको फल पाएर देवता झैं स्वर्गमा सानन्द सुखभोग गर्दछ। हे पृथिवी ! त्यस नर्तनाचल पर्वतमा नर्मदा नदीले शङ्करलाई हृदयमा राखेर सुकेका पात खाई हजार वर्षसम्म तपस्या गरेकी थिइन्। प्रसन्न हुनुभएका शिव आफ्ना गणहरूका साथ नर्मदालाई वर दिन प्रकट हुनुभयो र उतिखेर तिनलाई वर माग भन्नुभयो। नर्मदाले पनि अमृतजस्तो वचन सुनेर आफ्ना पवित्र आँखा खोलेर सबै देवताहरूद्वारा नमस्कार गरिनुभएका शिवको साक्षात् दर्शन प्राप्त गरिन् ॥५५-५९॥

हर्षले गद्‌गद् बोली भएकी नर्मदाले सिद्ध, निर्गुण, अचिन्तनीय र देवताहरूमा श्रेष्ठ र साँढेमा सवार हुनुभएका शिवको स्तुति गरिन् – सबै पदार्थहरूका भावस्वरूप र अभावस्वरूप तपाईंलाई सधैं नमस्कार छ भनी यसरी स्तुति गरेर, ३ पटक प्रदक्षिणा गरी बारम्बार पूजा गरेर, शिरले पाउमा प्रणाम गरी अञ्जलि बाँधेर नर्मदाले वर प्रार्थना गरिन् ॥६०-६२॥

नर्मदाले भनिन् – हे भगवान् ! यदि तपाईं प्रसन्न हुनुहुन्छ र चिताएको वर दिनुहुन्छ भने म तपाईंको उत्तम स्वरूप होऊँ र तपाईं मेरो गर्भबाट जन्मेको छोरो हुनुहोस् ॥६३॥

श्रीशिवले भन्नुभयो – हे देवि ! सबै देवताहरूका साथ गणेशलाई अघि लगाएर शिवलिङ्गका रूपमा म तिम्रो छोरो हुनेछु। हामी सबै शिवलिङ्ग र चक्राङ्कित शालग्राम शिला हुनेछौं र पूजा गर्नेलाई तार्नेछौं। यसबाट तिम्रो कीर्ति फैलिनेछ। हे पृथिवी ! यस प्रकार रेवालाई वर दिएर शङ्कर अदृश्य हुनुभयो। तिनै रेवा मानसकल्पमा १० हजार वर्षसम्म गण्डकी भएर रहिन्। हे पृथिवी ! त्यो शालग्रामपर्वतमा मानसकल्पमा दिव्य १०० वर्षसम्म सुकेका पात, फेरि जल र त्यसपछि वायुमात्र भोजन गरेर हृदयमा विष्णुलाई राखेर गण्डकी बनेकी रेवाले १०००० (दश हजार) वर्षसम्म नै तप गरिन् ॥६४-६८॥

त्यसपछि गरुडमा सवार हुनुभएका भगवान् विष्णुले मेघ जस्तो गम्भीर वाणीले प्रेमपूर्वक भन्नुभयो- तिम्रो असल भक्ति र तपद्वारा प्रसन्न छु। हे सुन्दरी ! म वर दिने भएको छु वर माग। गण्डकी पनि आकाशमण्डलमा कमल जस्तो सुन्दर आँखा भएका, सम्पूर्ण ब्रह्माण्डका गहना, दण्ड जस्ता प्रचण्ड हातहरूमा शंख र चक्र चम्केका, कौस्तुभमणिले छाती झल्झलाएका वनमालाले सुहाएका विष्णुलाई अगाडि देखेर भुइँमा लट्ठीझैं ढलेर आँखामा खुशीका आँसु भर्दै स्तुति गर्न लागिन् ॥६९-७२॥

गण्डक्युवाच
व्योमादीनि यतः सहस्रवपुषे लोकास्पदार्थं जग-
दुत्पत्त्याद्यधिकारिणे भवकृते सत्त्वादिसन्मूर्तये।
मान्यैर्मानसजादिकोटितनुभिर्माङ्गल्यसिद्धात्मभि-
र्भूदेवश्रुतिधर्मगोऽवनकृते तुभ्यं नमो माधव ! ॥७३॥
मित्राण्येव मुदा विना नियमिता विद्वेषिणः शृङ्खलै-
र्दासाः पञ्च च भोजनेन पशवो दाम्ना विहङ्गास्त्वया।
रज्वा दारसुतात्मबान्धवजना दायेन पात्राणि वै
स्थानैः क्षेत्रगृहातिथिश्रितजनास्तुभ्यं नमो माधव ! ॥७४॥
पादाः पन्नगमस्तके तव भुजाः प्राप्ता दिगन्ते विभो !
शीर्षाण्यम्बरमण्डले ध्रुवपदं छत्रं महार्हं गले।
शेषाङ्गेषु यथाक्रमेण रचितं लोकास्पदं पादतः
पातालं क्षितिमण्डलं सुरपदं तुभ्यं नमो विष्णवे ॥७५॥
पद्मस्थं चतुराननं श्रुतियुतं हंसादिरुढं सदा
स्रुक्सूत्राक्षकमण्डलूपकलितं रक्ताम्बरं प्राह्णके।
सावित्रीसहितं कुशार्पितकरं यज्ञाङ्गयुक्तं च ते
पश्येयं मुकुटादिमण्डनयुतं तुभ्यं नमो ब्रह्मणे ॥७६॥

---

गण्डकीले भनिन् – हे भगवान् लक्ष्मीपति ! लोकको निवासको निमित्त आकाश, पृथिवी आदि सृष्टि गरेर हजारौ स्वरूप धारण गर्ने जगत्को उत्पत्ति, स्थिति र संहारको अधिकार प्राप्त गरेका, संसारका विधाता, सत्त्व आदिको असल स्वरूप मानिएका, पवित्र र सिद्ध स्वरूपब्रह्माजीको मनबाट उत्पन्न, मान्य करोडौं मूर्तिद्वारा ब्राह्मण, वेद, धर्म, र गाईको रक्षा गर्नुहुनेतपाईं माधवलाई नमस्कार छ ॥७३॥

हे भगवन् ! हजुरले आफ्ना मित्रहरूलाई प्रसन्नताले वशीभूत गराउनुभएको छ, तपाईंले गरुडपक्षीद्वारा सूर्यादि ग्रहलाई नियन्त्रणमा लिनुभएको छ। तपाईंले ५ किसिमका सेवकहरूलाई उत्तम भोजनद्वारा वशमा राख्नुभएको छ। पशुहरूलाई दाम्लो र चराहरूलाई डोरीले नियन्त्रणमा राख्नुभएको छ। पत्नी, पुत्र र आत्मीय बान्धवहरूलाई धर्मद्वारा वशमा राख्नुभएको छ। धाम र घरमा आउने अतिथि र आश्रितहरूलाई उचित स्थान दिएर वशमा पार्नुभएको छ। यस्ता हे माधव ! म हजुरलाई प्रणाम गर्दछु ॥७४॥

हे व्यापक विष्णु ! जुन तपाईंका पाउहरू शेषनागको शिरमा, हातहरू दिशाहरूका छेउमा, शिरहरू आकाशमण्डलमा, गलाको मूल्यवान् छाता ध्रुवपद सम्मपुगेका छन्। पाउदेखि सुरु गरेर क्रमैले तपाईंका अङ्गहरूमा लोकजनहरूको आश्रयको व्यवस्था गरिएको छ र तीन पाइलाबाट पाताल, पृथिवी र स्वर्गको रचना गरिएको छ। यस्ता तपाईं विष्णुलाई नमस्कार छ। कमलासन, चतुर्मुख, वेदले युक्त हंसमा सवार, सुरो ,जनै, रुद्राक्ष र कमण्डलु लिने, रातो कपडा पहिरिने, सावित्रीलाई साथमा राख्ने, हातमा कुश धारण गर्ने, यज्ञका अङ्गरूप, मुकुट आदि गहनाहरू धारण गर्ने, तपाईंलाई म बिहानमा दर्शन गरूँ र यस्तो ब्रह्माको रूपधारण गर्ने तपाईं लक्ष्मीपतिलाई नमस्कार छ ॥७५–७६॥

मध्याह्ने वृषभं फणीन्द्रतनुभिः शीर्षादिसम्मण्डितं
वामाङ्गार्पितपार्वतीं त्रिनयनं गङ्गाधरं शूलिनम्।
शुभ्रं भूतगणान्वितं शशिधरं पश्येयमिष्टार्थदं
कामारिं जटिलं शिवं त्रिपुरदं तुभ्यं नमः शम्भवे ॥७७॥
मेघाभं मुकुटादिभिर्मणिमयैः शङ्खाब्जचक्रादिभि-
र्भ्राजन्तं मणिवैजयन्तिकमलस्रग्भिश्चतुर्बाहुभिः।
पश्येयं रमया युतं खगगतं पीताम्बरं ते सदा
सायाह्ने श्रुतिभिर्द्विजैः परियुतं तुभ्यं नमो माधव ! ॥७८॥
ब्रह्मन् ! ब्रह्मधिया धृते हृदि रवीन्द्वग्निप्रभौ वै सता-
मोमेतत्कलनादिते सममरुन्मेरुत्तमे मण्डपे।
नानावर्णविचित्रिते मणिमये सद्भावपीठे स्थितं
लोकेशं परमं समस्तफलदं तुभ्यं नमो माधव ! ॥७९॥
वन्दे वै सनकादिकांश्च कपिलं दत्तं तथैवार्षभं
मत्स्यं कूर्मवराहकौ नरहरिं वै वामनं भार्गवम्।
रामं दाशथिं तथा बलयुतं कृष्णञ्च बुद्धं विभुं
कल्किं कल्पितकोटिरूपमतुलं तुभ्यं नमो माधव ! ॥८०॥
वामाङ्गं तव सृष्टिकालमपरः सव्येतरं शाश्वतः
कालस्तत्प्रतिपक्षगो युगचतुर्हस्ता मुखं वत्सरः।
पादौ द्वे ह्ययने त्रिकालमुदरं शेषाङ्गकत्वादयो
लग्नाद्यायुधकाष्ठखण्डितजगत्तुभ्यं नमो माधव ! ॥८१॥
उत्क्षिप्ता ध्रुवतारका नभसिकेऽपक्षेपिताः पन्नगा-
स्तिर्यग्दक्षसुतास्त्वया गमयिताः पञ्चात्मना कर्मणि।
दिग्रागाक्तभुजा विराज अतुला आकुञ्चिताः कोटिशः
प्राक्सृष्टेः परिसारिता नियमितास्तुभ्यं नमो माधव ! ॥८२॥
सृष्ट्वा खादिगणञ्च तेष्वनुगतस्त्वं वै पुमानुच्यसे
जातं विश्वमिदं यतस्तदपि सद्ब्रह्मेति वेदोदितम्।
त्वच्छक्तिः परमा प्रधानमिति यस्त्वं वेद वै वेदवि -

---

साँढेमा सवारी गर्ने, नागका शरीरहरूले शिर आदि अङ्गलाई मण्डित गर्ने, देब्रे अङ्गमा पार्वतीलाई धारण गर्ने, तीन आँखाले सुहाएका, गङ्गाधारण गर्ने, हातमा त्रिशूल लिएका, सेता,भूतहरूले घेरिएका चन्द्र धारण गरेका इच्छाएको दिने, कामदेवका शत्रु, डरलाग्दा र त्रिपुर जलाउने शङ्करलाई म मध्यदिनमा हेरूँ र यस्ता शंकरको रूप लिने तपाईं(विष्णु) लाई नमस्कार छ। हे माधव ! मेघजस्तो स्वभाव भएका, मणिका मुकुट आदि र शंख, चक्र,कमल र तरवारहरूको साथै कौस्तुभमणि, वैजयन्ती माला, कमलको माला र चार हातहरूले सुहाउनुभएका, लक्ष्मीले सहित गरुडमा चढेका, पहेँला वस्त्र धारण गर्ने, वेद र ब्राह्मणहरूले सहित भएका तपाईंलाई म साँझमा हेरूँ र यस्ता तपाईंलाई नमस्कार गर्दछु ॥७७-७८॥

हे परब्रह्मरूपी माधव ! ब्रह्ममा बुद्धि लगाएका सज्जनहरूका सूर्य चन्द्र र अग्नि जस्तो कान्तिले सम्पन्न भएको ओंकारको सुन्दर शब्द प्रकट गर्ने समीरणसमान, मेरूपर्वतसमान हृदयाकार मण्डपमा, नानाप्रकारका वर्णहरूले चित्रविचित्र भएका, मणिमय उत्तम भावपीठमा विराजमान, सम्पूर्ण फलदायक र उत्तम लोकनाथ बनेका तपाईं माधवलाई नमस्कार छ। हे माधव ! तपाईंकोरूप भएका सनकादि, कपिल, दत्तात्रेय, ऋषभ, मत्स्य, कूर्म, वराह, नृसिंह, वामन, परशुराम, दशरथपुत्र राम, बलराम एवं कृष्ण, भगवान् बुद्ध र कल्किलाई नमस्कार छ , करोडौं रूप धारणगर्ने र अनुपम तपाईं विष्णुलाई नमस्कार छ ॥७९-८०॥

हे माधव ! सृष्टिकाल तपाईंको देब्रे अङ्ग, त्यसको प्रतिपक्ष बनेको अर्को शाश्वत काल तपाईंको दाहिने अङ्ग ४ युगहरू ४ हात, वर्ष मुख, दुई नयन खुट्टा तीन समय (भूत भविष्य र वर्तमान) पेट र लग्न आदि बाँकी अङ्गहरू भएका र आठ आयुधहरूद्वारा जगत् खण्डित बनाउनेतपाईंलाई नमस्कार छ। हे माधव ! सृष्टि भन्दा पहिले (वराह अवतारमा जलभित्र पस्दा र निस्कदाँ) ध्रुव आदि ताराहरू यढा फेँकिए, नागहरू चारैतिर आकाशमा मिल्काइए पाँच स्वरूप गरेर तपाईंद्वारा दक्षकन्या अश्विनी आदि नक्षत्रहरू काममा लगाइए, दिशाको लालिमाले हात सिगारिएका करोडौं विराट्पुरुषहरू खुम्च्याइए, फेँकिए र अधीनमा पनि राखिए यस्ता तपाईं माधवलाई नमस्कार छ ॥८१-८२॥

च्चिद्रूपः पुरुषः परोऽपि परमानन्दो ह्यकर्ता विभुः ॥८३॥
स्वां मायामनुगस्त्वमेव जगतां कर्ता तथा शोभसे
साक्षी त्वं परिसृज्यमानसमये मूलप्रकृत्या विभो !
सान्निध्ये तव कोटिभा स्फुरति भो ! माया यथा श्रीरवेः
कादम्बिन्युपतारतम्यबहुला ज्योतिः प्रकाशाद्धरे ॥८४॥
लोकेशादिमनीषया न विदितं मूढा कथं वेद्म्यहं
सर्वेशं करुणामयं श्रुतिनुतं नारायणं ते नमः।
यत्प्रोक्तं वरदेन वाञ्छितवरं ब्रूहीति वाञ्छामि भो !
पुत्रं गर्भगतं जगद्भयहरं नित्यं परं त्वत्समम् ॥८५॥
इत्येवं याचितो विष्णुर्गण्डक्या वरदर्षभः। गण्डकीमवदत् प्रीत्या सन्तुष्टस्तपसा विभुः ॥८६॥

श्रीविष्णुरुवाच

सन्तुष्टोऽहं वरारोहे ! स्तवेन तपसा तव। महिम्ना परमेणापि यथार्थेन सुशोभिना ॥८७॥
शालग्रामशिलारूपो तव गर्भगतः सदा। स्थास्यामि तव पुत्रत्वे भक्तानुग्रहकारणात् ॥८८॥
मत्सान्निध्यान्नदीनां त्वं श्रेष्ठा मान्या भविष्यसि। दर्शनात् स्पर्शनात् स्नानात् पानाच्चैवावगाहनात् ॥८९॥
हरिष्यामि महापापं वाङ्मनःकायसम्भवम्। दर्शनात् कुमतिं देवि ! त्यजेन्मर्त्यः स्वभावजाम् ॥९०॥
स्पर्शनात् सुमतिं पानात् सद्विद्यां स्वतमनो लभेत्। स्नानाच्च कायजं पापं त्यजेच्चैवावगाहनात् ॥९१॥
गण्डक्यां तर्पयेत् पितृन् विधिवद् देवपूर्वकम्। उद्धृत्य नरकात् पितृन् सकलांश्च दिवं नयेत् ॥९२॥
सकृत् स्नानादिकं कृत्वा नित्यं कर्म करोति यः। स वै मम प्रियो भूत्वा ब्रह्मलोके गमिष्यति ॥९३॥

---

हे माधव ! आकाश आदि पञ्चमहाभूतको समूहको सृष्टि गरेर र तिनीहरूमा प्रवेश गर्नेतपाईंले पुरुष नाम धारण गर्नुहुन्छ। जसबाट यो सारा संसारको सृष्टि भयो, यस्ता तपाईं वेदहरूद्वारा सत्यब्रह्म भनिनुहुन्छ। तपाईंकी उत्तम शक्ति प्रकृति भनिन्छिन् र वेद जान्ने तपाईं नै आफ्नी प्रकृतिलाई जान्नुहुन्छ। त्यसैले तपाईं चैतन्यरूपी उत्तम पुरुष भएकाले संसारमा व्याप्त भएर पनि केही नगर्ने पनि हुनुहुन्छ। हे सर्वव्यापी ! आफ्नी मायाको पछि लागेर तपाईं संसारको कर्ता भैं लाग्नुहुन्छ। आफ्नी मूलशक्तिद्वारा संसारको सृष्टि भैरहेको बेलामा तपाईं साक्षी बन्नुहुन्छ। हे भगवान् हरि ! तपाईंको प्रकाश परेको हुँदा नै नजिक रहेकी तपाईंकी माया भगवान् सूर्यको नजिक रहनाले समय समयमा घटबढ हुने बादलहरूको ताँतीसमान ज्योतिरूप बनेर प्रकाशित हुनेछन् ॥८३-८४॥

इन्द्र आदि लोकपालहरूका बुद्धिद्वारा पनि राम्ररी नजानिने तपाईंलाई म अज्ञानीले गण्डकी कसरी जान्न सक्छु ?सबै का स्वामी, दयालु, वेदले वन्दना गरिएका तपाईं नारायणलाई नमस्कार गर्दछु। चिताएको वर माग भनेर वरदाता तपाईंले जे कुरा गर्नुभयो, त्यस वरदानका रूपमा तपाईं जस्तै संसारको डर हटाउने, अविनाशी र उत्तम पुत्र म आफ्नो गर्भमा रहेको देख्न चाहन्छु। यसप्रकार प्रार्थना गरिएका, वरदाताहरूमा श्रेष्ठ, गण्डकीको तपस्याद्वारा प्रसन्न र सर्वव्यापी भगवान् विष्णुले गण्डकीलाई प्रेमपूर्वक भन्न लाग्नुभयो ॥८५-८६॥

श्रीविष्णुले भन्नुभयो - हे सुन्दरी गण्डकी ! तिम्रो परम महिमा, उत्तम सत्य, सुन्दर स्तुति र तपस्याका कारण म प्रसन्न छु। भक्तहरूमाथि करुणा गर्ने हेतुले म शालग्रामशिला बनेर छोराका रूपमा सधैँ तिम्रो गर्भमा रहनेछु। मसँगै रहेकाले मनुष्यहरूको दर्शन, स्पर्श, स्नान र प्रवेशहरूले गर्दा तिमी नदीहरूमा श्रेष्ठ र मान्य हुनेछौ।हे देवी ! तिमी मानिसहरूको वचन, मन र शरीरबाट भएका महापाप हरण गर्नेछ्यौ र मानिसले तिम्रो दर्शनमात्रले आफ्नो स्वाभाविक दुर्बुद्धिको परित्याग गर्नेछ ॥८७-९०॥

मानिसले तिम्रो स्पर्शले असल बुद्धि, र जलपानबाट आफ्नो असल विद्या प्राप्त गर्नेछ र तिमीभित्र प्रवेश गरेर स्नान गर्नाले शरीरबाटगरिएको पाप त्याग गर्नेछ ॥९१॥ जुन मानिसले विधिपूर्वक देवताहरूलाई तर्पण दिनुका साथै पितृहरूलाई तर्पण दिनेछ, त्यसले आफ्ना सम्पूर्ण पितृहरूलाई नरकबाट उद्धार गरेर स्वर्गमा लैजानेछ ॥९२॥ जुन मानिसले गण्डकीमा एकपटक पनि स्नान आदि गरेर नित्यकर्म सम्पन्न गर्छ, त्यसले मेरो प्यारो भएर ब्रह्मलोकको यात्रा गर्नेछ ॥९१-९३॥

एकरात्रं वसेद् यो वै त्वत्तीरे मामनुस्मरन्। ब्रह्मलोके वसेन्नित्यं पत्नीपुत्रसमन्वितः ॥९४॥
मासमेकं वसेद् यो वै त्वत्तीरे मामनुस्मरन्। ब्रह्मलोके वसेन्नित्यं सपत्नीकुलबान्धवः ॥९५॥
वर्षमेकं वसेद् यो वै त्वत्तीरे मामनुस्मरन्। वैकुण्ठे स वसेन्नित्यं पत्नीपुत्रसमन्वितः ॥९६॥
आजन्म गण्डकीतीरे यो वसेन्मामनुस्मरन्। सम्प्राप्य मम सायुज्यं वियुनक्ति न कर्हिचित् ॥९७॥
एवं दत्त्वा वरान् देवो गण्डक्यै परमार्थदान्। पश्यतां तत्रगानाञ्च तत्रैवान्तरधीयत ॥९८॥

इतिश्रीकश्यपकुलतिलककाश्यपचरणोपासककश्यपगोत्रीयश्रीकाशीरामविरचिते
श्रीगण्डकीमाहात्म्ये त्रिवेणीवर्णनं नामाष्टमोऽध्यायः ॥

---

जुन मानिस तिम्रो तीरमा मेरो स्मरण गर्दै एक रातसम्म बस्छ, त्यो मानिस सधैं पत्नी र पुत्रसँगै ब्रह्मलोकमा वास गर्नेछ। जुन मानिस तिम्रो तीरमा मलाई सम्झँदै एक महिनासम्म बस्छ त्यो मानिस पत्नीको कुल र आफ्ना दाजुभाइका साथ ब्रह्मलोकमा प्राप्त हुन्छ। जो मानिस तिम्रो तीरमा मलाई सम्झदै एक बर्षसम्म बस्छ, त्यो मानिस पत्नी र छोरासँगै सधैं वैकुण्ठमा वास गर्नेछ। जुन मानिस गण्डकीको तीरमा मलाई सम्झदैं आजीवनबस्नेछ, त्यो मानिस मेरो स्वरूपमा एकाकार हुनेछ र कहिल्यै पनि मबाट छुट्टिदैन। यसरी गण्डकीलाई परमार्थसिद्धि गराउने उत्तम वरहरू दिएर भगवान् विष्णु त्यहाँका दर्शकहरूले देख्दादेख्दै त्यहीं अदृश्य हुनुभयो ॥९४-९८॥

यसप्रकार कश्यपकुलका श्रेष्ठ काश्यपऋषिको चरणको उपासना गर्ने काश्यपगोत्रीय श्रीकाशीरामद्वारा रचित गण्डकीमाहात्म्यमा आठौं अध्याय परिपूर्ण भयो ॥८॥

## नवौं अध्याय : त्रिवेणीवर्णन

श्रीवराह उवाच

अन्यच्च ते प्रवक्ष्यामि परं गुह्यं वसुन्धरे ! शालङ्कायनकोऽप्यस्मिन् क्षेत्रे च परमे मम ॥१॥
शालग्रामे महत्तीव्रमास्थितः परमं तपः। ईश्वरेण समं पुत्रं प्राप्यामि तपसा ध्रुवम् ॥२॥
इति निश्चित्य स मुनिश्चचार परमं तपः। क्षिप्रप्रसादो भगवान् महादेवो दयानिधिः ॥३॥
शालङ्कायनपुत्रत्वं प्राप्तो मायामुपाश्रितः। तन्मुनेर्दक्षिणं पार्श्वमास्थितः करसम्पुटः ॥४॥
तमुवाच महादेवः सफलस्ते मनोरथः। जातोऽस्मि दक्षिणाङ्गात्ते पुत्र ते शाधि मां प्रभो ! ॥५॥
शिवोऽहं तपसा तुष्टस्त्वत्पुत्रं समागतः। उत्तिष्ठ नामधेयं मे कर्तुमर्हसि सुव्रतः ॥६॥
श्रुत्वा तत्परमं वाक्यं पुत्रभावगतस्य च। हरस्य परमानन्दं प्राप्तो वै विस्मितो मुनिः ॥७॥
तमुवाच नमस्तुभ्यं भक्तार्थं देहधारिणे। यदानन्दमयं वाक्यं श्रावितं मे महेश्वरः ॥८॥
नन्दीति नामधेयन्ते ददामि लोकनन्दन ! तपसा दर्शनं प्राप्तं तव शम्भो ! मयाऽधुना ॥९॥

---

श्रीवराहले भन्नुभयो – हे पृथिवी ! अरू पनि अत्यन्त रहस्यमय कुरा म तिमीलाई भन्दछु। मेरो यो उत्तम शालग्राम क्षेत्र त्रिवेणीमा शालङ्कायन नाम गरेका ऋषि पनि ज्यादै कठोर र उत्तम तप गरिरहेका थिए। तपद्वारा निश्चय नै ईश्वर जस्तै पुत्र पाउने छु भन्ने निश्चित गरेर ती ऋषिले परम तपस्या गरे। आशुतोष र दयालु भगवान् शङ्कर मायाको आश्रय लिएर शालङ्कायन ऋषिको छोराका रूपमा हात जोड्दै उनको दायाँ भागबाट पैदा भएर उभिनुभयो ॥१-४॥

महादेवले ऋषिलाई भन्नुभयो – हे प्रभु ! तपाईंको मनोरथ पूर्ण भयो। म तपाईंको दायाँ अङ्गबाट जन्मेको छु मलाई आज्ञा दिनुहोस्। हे उत्तम व्रत धारण गर्ने ऋषि ! तपाईंको तपद्वारा प्रसन्न भएको हुँदा म शिव आफैंतपाईंको छोरो बनेको छु। उठ्नुहोस् र मेरो नामकरण गर्नुहोस् ॥५-६॥

आफ्नो पुत्रका रूपमा प्रकट हुनुभएका शिवको त्यो उत्तम वचन सुनेर चकित भएका ऋषि उत्तम आनन्दमा मग्न भए र पुत्ररूप शिवलाई भने – हे लोकलाई आनन्द दिने महादेव ! भक्तको निम्ति देहधारण गर्ने तपाईंलाई नमस्कार गर्दछु। मलाई तपाईंले हर्षदायक वचन सुनाउनु भयो। यसैले तपाईंलाई नन्दी भनी नामकरण गर्दछु। हे शङ्कर ! आज मैले मैले तपस्याद्वारा नै तपाईंको दर्शन प्राप्त गरेको छु ॥७-९॥

तपःसु जातविश्वासं विद्धि मां तपसि स्थितम्। तपाम्यत्रैव विश्वासाद् यावदच्युतदर्शनम्॥१०॥
पुत्र ! त्वं मन्नियोगेन मथुरां व्रज सत्वरम्। गत्वा मदाश्रमे पुण्ये धनं गोव्रजसङ्कुलम्॥११॥
आमुष्यायणमच्छिष्यमादाय शीघ्रमानय। तदाज्ञां शिरसादाय जगाम मथुरां प्रति॥१२॥
दृष्ट्वामुष्यायणं तत्र दृष्ट्वानामयमप्युत। गृहे वित्ते च कुशलमपृच्छद् गोधनेऽपि च॥१३॥
आमुष्यायणसंज्ञोऽपि तमुवाच महामतिः। सर्वत्र कुशलं साधो ! प्रसादाद् गुरुपद्मयोः॥१४॥
गुरोश्च कुशलं ब्रूहि कुत्रास्ते स तपोधनः। भवान् कुतः समायातः किमत्रागमकारणम्॥१५॥
तन्मे विस्तरतो ब्रूहि गृहाणार्घ्यं नमोऽस्तु ते। तेनोक्तं सर्ववृत्तान्तं यथावत् पितृपुत्रयोः॥१६॥
पाद्यादिमधुपर्कान्तमादायोज्झितदुःश्रमः। गृहीत्वा गोधनं सर्वं नन्दी तेन समन्वितः॥१७॥
सम्प्राप्य गण्डकीतीरे त्रिवेण्यां कतिभिर्दिनैः। विधिवत् पञ्चरात्राणि कृत्वा नन्दी सगोधनः॥१८॥
हरिक्षेत्रं जगामाशु यत्र सन्निहितो हरिः। यदा नन्दी शूलपाणिर्गोधनेन पुरस्कृतः॥१९॥
स्थितवान् तद्दिनादेतत्क्षेत्रं हरिहरात्मकम्। शूलपाणिश्च देवेशो भक्तानामभयप्रदः॥२०॥
मुनिभिर्देवगन्धर्वैः सेव्यतेऽचिन्त्यशक्तिमान्। शालङ्कायनपुत्रो हि नन्दिरूपेण शङ्करः॥२१॥
प्राप्तः साक्षाच्छिवस्तत्र भुक्तिमुक्तिप्रदः प्रभुः। आस्थितः परमं पीठं योगिषु योगसिद्धये॥२२॥
त्रिजटाभ्योऽवहन्धारास्तिस्रो वै परमाद्भुताः। गङ्गा ग यमुना चैव तथा पुण्या सरस्वती॥२३॥
जातं त्रैधारिकं धाम भुक्तिमुक्तिफलप्रदम्। शालग्रामाभिधे क्षेत्रे यत्र शम्भुः स्थितः स्वयम्॥२४॥
दिशन् ज्ञानं स्वभक्तेभ्यस्तिष्ठत्यत्र युगे युगे। तीर्थे त्रैधारिके स्नात्वा सन्तर्प्य पितृदेवताः॥२५॥
महायोगिनमभ्यर्च्य न भूयो जन्मभाग् भवेत्। तस्यैव पूर्वदिग्भागे हंसतीर्थमिति स्मृतम्॥२६॥

---

हे पुत्ररूप शिव ! मलाई तपाईंले तपस्यामा विश्वास गर्ने र तपस्यामा मात्र अडिग रहने भक्त हो भनी जान्नुहोस्। भगवान् विष्णुको दर्शन पाउने विश्वास लिएर म यसै शालग्रामक्षेत्रमा तपस्या गर्नेछु। हे छोरा नन्दी ! तपाईं मेरो आदेशले तुरुन्त मथुरा जानुहोस् र मथुरामा मेरो पवित्र आश्रममा गएर गाईको बथान लिएर बसेका मेरा शिष्य आमुष्यायणलाई लिएर चाँडै आउनुहोस्। यसप्रकार शालङ्कायनको यस्तो आज्ञालाई शिरमा राखेर नन्दी मथुरातिर जानुभयो। त्यहाँ सकुशल आमुष्यायणलाई देखेर नन्दीले घर, सम्पत्ति र महत्त्वपूर्ण गोधनका विषयमा पनि कुशल प्रश्न गर्नुभयो॥१०-१३॥

बुद्धिमान् आमुष्यायनले पनि नन्दीलाई भने - हे साधु ! गुरुका पाउका कृपाले सबै कुशल छ। गुरु शालङ्कायनको कुशलताको विषयमा भन्नुहोस्, तपोधन मेरा गुरु कहाँ हुनुहुन्छ ? तपाईं कहाँबाट यहाँ आउनुभयो ? यहाँ किन आउनुभयो ? मेरो प्रश्नको राम्ररी उत्तर दिनुहोस्, अर्घ्य ग्रहण गर्नुहोस्। तपाईंलाई नमस्कार गर्दछु। नन्दीले पनि बाबु र छोराको यथार्थ वृत्तान्त बताए॥१५-१६॥

पाउधुने जलदेखि मधुपर्कसम्मका सबै पूजासामग्री स्वीकार गरेपछि आफ्नो कठोर थकाइ मेटिएका नन्दीले सबै गोधनलाई लिएर आमुष्यायणका साथ केही दिनमा गण्डकीको तीरमा त्रिवेणी पुगेर, विधिपूर्वक पंचरात्रव्रतहरू सम्पन्न गरे। गोधनसँगै लिएर नन्दी तुरुन्त भगवान् विष्णु रहेको प्रसिद्ध हरिक्षेत्र गण्डकी र गङ्गाको सङ्गममा गए। जब नन्दी नामका भगवान् शिव त्यहाँ पुग्नुभयो, त्यस दिनदेखि त्यो हरिक्षेत्र हरिहरक्षेत्र बन्यो। त्यहाँ भक्तहरूलाई अभय दिने र अनन्त शक्ति भएका भगवान् शिव ऋषि, देवता र गन्धर्वहरूद्वारा सेवा गरिनुहुन्छ। त्यहाँ लोककल्याण गर्ने, भुक्ति र मुक्ति दुबै दिने शालङ्कायन ऋषिका छोरा नन्दीको स्वरूपमा साक्षात् भगवान् शिव नै योगीहरूको योगसिद्धिका लागि यो उत्तमपीठमा विराजमान हुनुहुन्छ॥१७-२२॥

भगवान् शिवका जटाका तीन तीनभागबाट बगेका गङ्गा, यमुना र सरस्वती नामक ज्यादै पवित्र र आश्चर्यदायक तीनवटा जलधाराहरू त्यहाँ बगेका छन्। यसैले यो शालग्रामक्षेत्र (मुक्तिक्षेत्रदेखि हरिक्षेत्रसम्मको भाग) मा भुक्ति र मुक्ति दुबै फल दिने तीनधाराहरू गङ्गा यमुना र सरस्वतीको एउटा पुण्यक्षेत्र बनेको छ, जहाँ स्वयं शिव रहनुभएको छ। यहाँ शिव आफ्ना भक्तहरूलाई ज्ञान दिँदै युगौं युगसम्म रहनुहुन्छ। यी तीनधारा भएको तीर्थमा नुहाएर पितृ र देवताहरूलाई तर्पण दिएर र महायोगी शिवको पूजा गरेर मानिस फेरि जन्मदैन। यसको पूर्वदिशातर्फ हंसतीर्थ भन्ने पुण्यतीर्थ मानिएको छ॥२३-२६॥

तत्रैव कौतुकं वृत्तं तच्छृणुष्व महत्तरम्। कदाचिच्छिवरात्र्यां तु पूजारम्भमहोत्सवे ॥२७॥
नैवेद्यान् विविधान् सृष्ट्वा व्रतिभिः शिवप्रीतये। तत्र काकाः समुत्पेतुर्दृष्ट्वा चैव बुभुक्षिताः ॥२८॥
गृहीत्वान्नं ततः काक उड्डयते नभोगतः। अपरस्तु तदादातुं तेनाऽयुध्यत चाम्बरे ॥२९॥
तावुभौ युद्धयमानौ तु तत्र कुण्डे निपेततुः। हंसरूपधरौ तौ तु निर्गतौ चन्द्रवर्चसौ ॥३०॥
तद् दृष्ट्वा महदाश्चर्यं मेनिरे सकला जनाः। हंसतीर्थमिति प्राहुस्ततःप्रभृति वै धरे ! ॥३१॥
तत्र स्नातो नरः शुद्धो यक्षलोके महीयते। तत्रापि मुञ्चति प्राणाञ्छिवभक्तिपरायणः ॥३२॥
यक्षलोकमतिक्रम्य मम लोके प्रपद्यते। पूर्वं यक्षकृतं तीर्थं यक्षतीर्थमिति स्मृतम् ॥३३॥
काकौ हंसगती दृष्ट्वा हंसतीर्थमिति स्मृतम्। अथान्यत्ते प्रवक्ष्यामि चक्रतीर्थमिति स्मृतम् ॥३४॥
सेतिहासं हरेः कीर्तिं यच्छ्रुत्वा मुच्यते नरः। पुरा वेदनिधेः पुत्रौ जयो विजय एव च ॥३५॥
तृणविन्दोः सुतायां यौ जातौ दृष्ट्वैव सुव्रतौ। यज्ञविद्यासु निपुणौ वेदवेदाङ्गपारगौ ॥३६॥
पूजयन्तौ हरिं भक्त्या तन्निष्ठेन्द्रियमानसौ। तयोः पूजयतोर्नित्यं सान्निध्यं किल केशवः ॥३७॥
ददाति पूजावसरे भक्त्या किल वशीकृतः। मरुत्तेन कदाचित्तावाहूतौ कुशलौ द्विजौ ॥३८॥
राज्ञा समाप्तयज्ञेन पूजयित्वा पुरस्कृतौ। दक्षिणाभिस्तोषयित्वा विसृष्टौ गृहमागतौ ॥३९॥
विभागं कर्तुमारब्धौ पस्पर्द्धतुः परस्परम्। समो विभागः कर्तव्य इति ज्येष्ठोऽभ्यभाषत ॥४०॥
विजयश्चाब्रवीच्चैनं येन लब्धं हि तस्य तत्। जयोऽब्रवीदसामर्थ्यं मन्वानो मां ब्रवीषि किम् ? ॥४१॥
न ददासि गृहीत्वा यत् तस्माद् ग्राहत्वमाप्नुहि। विजयोऽप्यब्रवीन्नूनमन्धीभूतोऽसि किं धनैः ॥४२॥
गजो भव मदान्धस्त्वं यो मामेवं प्रभाषसे। एवं तौ ग्राहमातङ्गावभूतां शापतः पृथक् ॥४३॥

---

यस हंसतीर्थका विषयमा एउटा चाखलाग्दो र महत्त्वपूर्ण कथा सुन्नुहोस्। कुनै समयमा शिवरात्रिमा शिवलाई खुशी पार्न नानाप्रकारका नैवेद्यहरू बनाएर कर्ताहरूले पूजा सुरु गरेर रमाइलो मनाइरहेका थिए, त्यसबेला त्यहाँ भोकाएका कागहरूले नैवेद्यमाथि झम्टिए।ती मध्ये एउटा काग त्यहाँबाट नैवेद्य लिएर उडेर आकाशमा गयो। अर्को काग त्यो नैवेद्य खोस्न भनी त्यो कागसँग आकाशमा गएर लड्यो। लडाइ गरिरहेका ती दुबै काग हंसतीर्थ कुण्डमा खसे र जुनेली जस्ता सेता दुई हाँस बनेर बाहिर प्रकट भए ॥२७-३०॥

सबै मानिसहरूले त्यो देखेर ठूलो अचम्म माने। हे पृथिवी ! त्यस बेलादेखि त्यस कुण्डको नाम हंसतीर्थ राखियो। त्यहाँ नुहाएर शुद्ध भएको मानिस यक्षलोकमा गएर सुहाउँछ। शिवभक्तिमा परायण त्यस व्यक्ति जब त्यहाँ प्राण त्याग गर्छ, त्यो यक्षलोक नाघेर मेरो वैकुण्ठ लोकमा प्राप्त हुन्छ। पहिले यक्षहरूले निवास गरेको तीर्थ नै यक्षतीर्थ मानिएको छ। कागहरूको गति हाँसको जस्तो देखिएको हुँदा नै त्यसलाई हंसतीर्थ मानिएको छ ॥३१-३३॥

अब म तिमीलाई चक्रतीर्थ नामको अर्को प्रसिद्ध तीर्थको इतिहास बताउँछु। पहिले वेदनिधि नामक ब्राह्मणले तृणविन्दुकी छोरीमा जय र विजय नाम गरेका २ छोराहरू पैदा गरे। तिनीहरू देख्दैमा उत्तम व्रत गर्ने, यज्ञविद्यामा कुशल, वेद र वेदाङ्गहरूमा पारङ्गत, भक्तिले हरिपूजा गर्ने र हरिमा नै इन्द्रिय र मन लगाएका थिए। निरन्तर पूजा गर्ने तिनीहरूको भक्तिको वशमा परेर भगवान् विष्णु पूजा गर्दा नजिक नै रहनुहुन्थ्यो। कुनै समयमा ती कुशल ब्राह्मण मरुत्त नाम गरेका राजाद्वारा बोलाइए ॥३४-३८॥

यज्ञ गरिसकेका राजा मरुत्तले पूजा गरेर उनीहरूलाई पुरस्कार दिए, दक्षिणहरूद्वारा प्रसन्न तुल्याए, बिदा गरे र उनीहरू दुबै घरमा आएर धन बाँड्न सुरु गरे। त्यसबेला ती दुबै परस्पर झगडा गर्न लागे। जयले भने – बराबर भाग लगाउनुपर्दछ। कान्छा विजयले जेठालाई भने – जसले जे पायो, त्यो त्यसैको हुन्छ। जयले भने – मलाई असमर्थ सम्झेर मसँग यसरी कुरा गर्छस् ? धन लिएर दिँदैनस् भने तँ गोही भएर जा। विजयले पनि भने – तिमी धनले निश्चय नै अन्धो भएका छौ, हात्ती होऊ। यसप्रकारको छुट्टै छुट्टै सरापले ती दुबै गोही र हात्ती भए ॥३९-४३॥

गण्डक्यामेव सञ्जातो ग्राहो जातिस्मरो द्विजः । त्रिवेणीक्षेत्रमध्ये तु जयोऽभूद् वै महागजः ॥४४॥
करिभिः करिशावैश्च क्रीडमानो वने वसन् । बहून्यब्दसहस्राणि व्यतीतानि तयोस्तदा ॥४५॥
वने विहरतोर्भूमे ! शापमोहितयोर्ध्रुवम् । कदाचित् स गजः स्नातुं करेणुगणसंवृतः ॥४६॥
त्रिवेणीमगमत्तूर्णमवगाहपरो यतः । सिञ्चन् करेणूस्ताभिश्च सिच्यमानो जलं पिबन् ॥४७॥
स्वयञ्च पाययँस्ताश्च क्रीडने प्रीतमानसः । एवं सङ्क्रीडतस्तत्र त्रिवेण्यां दैवसंयोगतः ॥४८॥
ग्राहो जग्राह तं तत्र पूर्ववैरमनुस्मरन् । पादग्रस्तो गजोऽप्येनं विषाणेनाप्यताडयत् ॥४९॥
तयोर्युद्धं समभवद् बहुकालं परस्परम् । आकर्षणैर्दन्तघातैर्मर्दयन्तौ परस्परम् ॥५०॥
जलस्थलगतौ क्रुद्धौ भिन्नाङ्गौ मर्मभेदिनौ । प्रयुद्ध्यतोस्तयोरेवं जलस्थानगतानि च ॥५१॥
सत्त्वानि स्थूलसूक्ष्माणि बहून्यपि क्षयं ययुः । ततो जलेश्वरो देवो भगवन्तं व्यजिज्ञपत् ॥५२॥
तेन विज्ञापितो विष्णुर्भगवान् भक्तवत्सलः । चक्रेण ग्राहवदनं तूर्णञ्च समपाटयत् ॥५३॥
चक्रसङ्घट्टनात्तत्र चासन् चक्राङ्किताः शिलाः । पतितं प्रथमं यत्र तत्र खातमभूद्धरे ! ॥५४॥
तदेवं चक्रतीर्थन्तु तीर्थानामुत्तमोत्तमम् । तत्र स्नानेन तेजस्वी सूर्यलोके महीयते ॥५५॥
यदि प्राणैर्वियुज्येत मम लोके महीयते । तत्र स्नानादिकं कृत्वा पुण्यं शतगुणं भवेत् ॥५६॥
तत्र श्राद्धादिकं कृत्वा वैकुण्ठं प्रापयेत् पितॄन् । एवं चक्रमयं जातं तत्क्षेत्रं मत्प्रियं धरे ! ॥५७॥
पञ्चरात्रं वसेद् यो वै स गच्छेत् परमं पदम् । एवं तौ ग्राहमातङ्गावुद्धतौ विष्णुना पुरा ॥५८॥
दत्त्वा स्वरूपं वैकुण्ठे नीतौ स्वगणभावितौ । अथादिकल्पे धर्मात्मा मनुवंशसमुद्भवः ॥५९॥
आर्षभो भरतो नाम भारते चक्रवर्त्यभूत् । धर्मेण पालयामास प्रजाः पुत्रानिवौरसान् ॥६०॥

---

पूर्वजन्म सम्झने ब्राह्मण विजय गण्डकीमा गोही बने र जय त्रिवेणीक्षेत्रको माझमा नै ठूलो हात्ती बनी हात्तीका बच्चाहरूसँग खेलेर वनमा रहन थाले । हे पृथिवी ! आ–आफ्नो सरापले मोहित भएर वन, जङ्गल र जलमा विहार गर्ने उनीहरूका त्यतिखेर धेरै हजार वर्षहरू बिते । कुनै समयमा त्यो हात्ती थुप्रै हथिनीहरूसँग नुहाउनका लागि तुरुन्त त्रिवेणीमा ओर्ल्यो र पानीमा डुबेर हथिनीहरूलाई पानी छर्दै र हथिनीहरूद्वारा पानी छरिँदै अनि आफै तिनीहरूलाई पानी पियाउँदै जलक्रीडा गर्नमा मात्र मन लगायो । यसप्रकार त्यो त्रिवेणी तीर्थमा खेल्ने त्यस हात्तीको दैवसंयोगले गर्दा त्यसै ठाउँमा पूर्वजन्मको रीस फेर्दै गोहीले आएर त्यस हात्तीलाई समात्यो । खुट्टा तानिएको हात्तीले पनि त्यो गोहीलाई दाह्राले चिथोऱ्यो ॥४४–४९॥

ती दुबैको धेरै समयसम्म परस्पर युद्ध भयो । खिचातानी र दाँतका प्रहारद्वारा एक अर्कालाई पीडा दिने, पानी र जमिनमा रहेका, रिसाएका,घाउ लागेका र मर्म भेदन गर्ने ती दुबै यसरी लड्नाले जल र स्थलमा रहेका ठूला साना धेरै प्राणीहरू नष्ट भए । त्यसपछि जलदेवता वरुणले यो कुरा भगवान् विष्णुलाई जानकारी दिए । जलका देवता वरुणद्वारा प्रार्थना गरिएका र भक्तप्रिय भगवान् विष्णुले आफ्नो सुदर्शनचक्रद्वारा तुरुन्त गोहीको मुख च्यातिदिनुभयो ॥५०–५३॥

हे पृथिवी ! त्यहाँ विष्णुको चक्र घोटिनाले शिलाहरू चक्राकित भए । जहाँ पहिले चक्र फऱ्यो, त्यहाँ खाल्ट्ये भयो । यसप्रकार त्यो चक्रतीर्थ तीर्थहरूमा पनि उत्तम भन्दा उत्तम भयो, त्यहाँ स्नान गरेर तेजस्वी हुन गएको मानिस सूर्यलोकमा शोभायमान हुन्छ । त्यहाँ श्राद्ध आदि गरेर मानिसले पितृहरूलाई वैकुण्ठ पुऱ्याउँछ । हे पृथिवी ! यसप्रकार त्यो त्रिवेणीक्षेत्र मेरो चक्रको रूप भएकोले मेरो प्यारो भएको छ । जो मानिस यहाँ ५ रातसम्म बस्छ, त्यो मानिस परमपदमा नै प्राप्त हुन्छ । यसरी पहिले विष्णुले गोही र हात्तीको उद्धार गर्नुभयो, आफ्नो रूप दिएर वैकुण्ठमा लैजानुभयो र आफ्ना गणहरूमा समावेश गराउनुभयो ॥५४–५८॥

भगवान् विष्णुले भन्नुभयो – हे पृथ्वी ! यसपछि आदिकल्पमा मनुका वंशमा उत्पन्न भएका ऋषभका छोरा धर्मात्मा राजा भरतले भारतवर्षमा चक्रवर्ती राजा भएर प्रजाहरूलाई आफ्नै कोखबाट जन्मेका सन्तानसरह धर्मले पालन गरे ॥५९–६०॥

अश्वमेधादियज्ञानां कर्ता दाता च भूगवाम्। तेन त्रिजगतामेव वेदवेदाङ्गपारगः ॥६१॥
बुभुजे विषयान् सर्वान् बुधो धर्ममपीडयन्। ज्ञानदृष्ट्वा विरक्तोऽसौ पुत्रे न्यस्य धराभरम् ॥६२॥
जगाम गण्डकीतीरे पुलस्त्यपुलहाश्रमे। स्थित्वा तत्र महाविष्णुमभजद् बहुवत्सरम् ॥६३॥
त्रिजलेशं समभ्यर्च्य योगसिद्धिमवाप सः। कदाचिन्मृगशावोऽस्य संप्राप्तो मृतमातृकः ॥६४॥
तं पुपोष दयासिन्धुः पितृवद् बहु लालयन्। तत्सङ्गाद् योगभ्रष्टोऽभूत् त्यक्तप्राङ्नियमो नृपः ॥६५॥
नष्टमृगशुचा पश्चाच्छोकेनैव मृतो नृपः। मृगोऽभून्मृगसंसर्गात्त्रिकालज्ञः शिवार्चनात् ॥६६॥
तथाविधोऽपि तत्क्षेत्रमाश्रित्य शिवचिन्तनात्। मृगस्तत्रैव क्षेत्रस्य प्रभावाद् ब्राह्मणोऽभवत् ॥६७॥
सर्वज्ञः सर्वदोषज्ञो जडवद्भावमाचरन्। तदापि सोऽवसत्तत्र त्रिवेण्यां पुलहाश्रमे ॥६८॥
नित्यं समर्चयद् देवं त्रिजलेशं महामतिः। अर्चनादेव तेनाऽसौ भरतेश इति स्मृतः ॥६९॥
जडेशो जडभावत्वात् तस्य नाम्ना च कर्मणा। तत्रस्थोऽप्यभजद् विष्णुं शिवञ्च बुद्धिमाश्रितः ॥७०॥
सर्वसङ्गविनिर्मुक्तः समवाप परं पदम्। भरताख्यानमेतच्च परमं पुण्यदायकम् ॥७१॥

धरोवाच

यज्ञमूर्ते ! महाविष्णो ! शालङ्कायनको मुनिः। तप्यमानो महाक्षेत्रे तव दर्शनलालसः ॥७२॥
का सिद्धिः किं फलं तत्र दर्शनं वा कथं तव ?। स मुनिरलभत् केन कर्मणा ब्रूहि मे ध्रुवम् ॥७३॥

विष्णुरुवाच

तप्यमानो यथान्यायं मद्भक्तः कामवर्जितः। अपश्यदुत्तमं शालं दृढशाखं सुपुष्पितम् ॥७४॥
अपश्यन् मण्डपारूढं त्रिमूलं पञ्चशाखिनम्। दशैकपल्लवं पञ्चदशभिः परिवेष्टितम् ॥७५॥
पञ्चमर्कटसन्त्रस्तौ पक्षिणौ रक्षणक्षमौ। चतुर्दिग्ब्राह्मणैरेव पक्षिणोः कलहच्छिदम् ॥७६॥
पञ्चपुत्रिकया सत्या सिञ्चनाफलनोद्यतम्। चलाचलानां त्रैलोक्यवासिनां परमाश्रमम् ॥७७॥

---

अश्वमेध आदि यज्ञ गर्ने, पृथिवी र गाईको दान गर्ने, वेद र वेदाङ्गमा पारङ्गत भएका, विद्वान् राजा भरतले धर्ममा बाधा नपारी तीनै लोकका सारा विषयसुखको भोग गरे। ज्ञानको दृष्टिले वैराग्य उत्पन्न भएका यी राजा आफ्ना छोरालाई राज्यभार सुम्पेर गण्डकी नदीको तीरमा पुलस्त्य र पुलह ऋषिको आश्रममा गए र त्यहाँ धेरै वर्षसम्म महाविष्णुको भजन गरे। त्यहाँ त्रिजलेश्वर महादेवको पूजा गरेर उनले योगसिद्धि प्राप्त गरे। कुनै समयमा आमा मरेको (टुहुरो) मृगको बच्चा उनको नजिक आयो। दयाका सागर ती राजाले त्यो मृगको बच्चालाई धेरै माया गरेर बाबुले भैँ पालनपोषण गरे। पहिलेका जप, ध्यान आदि छोडिसकेका ती राजा त्यस मृगको बच्चाका सङ्गतले योगभ्रष्ट भए ॥६१–६५॥

पछि मरेका मृगको शोकले गर्दा राजा शोकले नै मरे। शिवको पूजाले त्रिकालदर्शी राजा पनि मृगको संगतका कारणले मृगयोनिमा पैदा भए ॥६६॥ मृग भै जन्मिए पनि गण्डकीक्षेत्रको आश्रय लिएर शिवचिन्तन गरेको परिणामस्वरूप त्यहीँ मरे र त्यस गण्डकीक्षेत्रको प्रभावले ब्राह्मण भएर जन्मे। सर्वज्ञ र दोषज्ञ ती ब्राह्मण जड भाव प्रकट गर्दै त्यस जन्ममा पनि त्यही त्रिवेणीको पुलहाश्रममा बसे। महामनीषी जडभरतले भगवान् त्रिजलेशको निरन्तर पूजा गरे। उनले पूजा गरेको हुनाले नै भगवान् त्रिजलेश भरतेश नामले र उनको नाम र कर्मअनुसार जडभावले गर्दा जडभरत पनि मानिए। त्यस पुलहआश्रममा रहेका र बुद्धिप्राप्त गरिसकेका जडभरत सबैको साथ छोडेर विष्णु र शिवको आराधना गरी परमपदमा प्राप्त भए। यसप्रकार यो जडभरतको उपाख्यान ज्यादै पवित्र मानिन्छ ॥६७–७१॥

पृथिवीले भनिन् – यज्ञमूर्ति हे महाविष्णु ! शालङ्कायन ऋषिले तपाईंको दर्शनको इच्छा गरी तपस्या गरेर यस शालग्राम महाक्षेत्रमा कस्तो सिद्धि र के फल प्राप्त गरे? ती मुनिले त्यहाँ कुन कर्मले कसरी हजुरको दर्शन पाए ? यो प्रश्नको उत्तर मलाई बताउनुहोस्। निष्काम भई विधिपूर्वक तपस्यारत मेरा भक्त शालङ्कायले बलिया शाखा भएको, उत्तम पुण्यले भकिभकाउ भएको, आफ्नै सामु मण्डपमा उठेको, सत्त्वगुण, रजोगुण र तमोगुणको जरा गाडेर उभिएको, गन्ध, रस, रूप, स्पर्श र शब्दरूप ५ विषयलाई ५ हाँगाका रूपमा धारण गर्ने, ५ ज्ञानेन्द्रिय, ५ कर्मेन्द्रिय र मनसमेत ११ इन्द्रियलाई पालुवाका रूपमा धारण गर्ने, पृथिवी, जल, तेज, वायु र आकाशरूप ५ महाभूत, ५ तन्मात्रा र मन बुद्धि, अहङ्कार, चित्त एवं प्रकृति गरी १५ तत्त्वबाट जेलिएको गन्ध, रस, रूप, स्पर्श एवं शब्दरूप विषयनामक बाँदरहरूबाट डराएका जीवात्मा र परमात्मारूपी २ वटा पक्षीहरूको भगडालाई ४ दिशारूप ब्राह्मणहरूद्वारा शान्त तुल्याउने, ५ वृत्ति भएको बुद्धिरुपिणी पतिव्रता नारीद्वारा विवेकजलको सेचन गरी मोक्षरूप फलप्रदान गर्न तीनै लोकका सबै प्राणीहरूलाई आश्रय प्रदान गर्ने, सुन्दर एवं सुगन्धित देवताहरूका लागि पनि दुर्लभ उत्तम शालवृक्षको दर्शन गरे ॥७२–७७॥

मनोज्ञञ्च सुगन्धाढ्यं देवानामपि दुर्लभम्। सर्वत्र भ्रमणं कृत्वा परिश्रान्तो महामुनिः ॥७८॥

विश्राममकरोत्तत्र द्रष्टुकामोऽथ मां मुनिः। शालस्य पूर्वभागस्थो वैशाखद्वादशीदिने ॥७९॥

तत्राहं प्राङ्मुखो देवि ! स तु प्रत्यङ्मुखो मुनिः। तुष्टाव मां स ऋक्सूक्तैरोङ्कारमन्त्रपूर्वकैः ॥८०॥

तुष्टाव मां महादेवि ! पूर्ववद् विधिपूर्वकम्। ततो हि पश्चिमे भागे वृक्षस्य पश्चिमाननः ॥८१॥

स मुनिः प्राङ्मुखस्तत्र तुष्टाव सामसूक्तकैः। ततोऽहमुत्तरे भागे वृक्षस्य चोत्तराननः ॥८२॥

तुष्टावाथर्वसूक्तेन मुनिर्मां दक्षिणामुखः। एवं संस्तूयमानोऽहं मुनिना वेदमन्त्रकैः ॥८३॥

तमवोचं वरारोहे ! सन्तुष्टस्तस्य कर्मणा। ब्रह्मन् ते तपसा तुष्टः स्तुत्या च भक्तियुक्तया ॥८४॥

वरं वरय विप्र त्वं यत्ते मनसि वर्तते। एवमुक्तो मया देवि ! शालङ्कायनको मुनिः ॥८५॥

शालवृक्षाश्रितः सिद्धो मामुवाच कृताञ्जलिः। तवैवाराधनार्थाय तपस्तप्तं मया हरे ! ॥८६॥

समाक्रमं महीं सर्वां सशैलवनकाननाम्। न जातं दर्शनं विष्णो ! तव त्रैलोक्यदुर्लभम् ॥८७॥

कृताश्रमोऽहं वृक्षेऽस्मिन् परिश्रान्तोऽतिकर्षितः। स्तुवँस्त्वां दर्शनाकाङ्क्षी कञ्चित् कालं विलम्बयन् ॥८८॥

दृष्टोऽसि पुण्यैः पूर्वेषां कथञ्चित् परमेश्वरः। वरं ब्रूहीति यत्प्रोक्तं वरस्त्वद्दर्शनावधिः ॥८९॥

तथापि वै वरं देहि मह्यं शम्भुसमं सुतम्।

विष्णुरुवाच

शालङ्कायन ! कामस्ते जातः शम्भोः प्रसादतः ॥९०॥

त्वद्दक्षिणाङ्गात् संजातो नाम्ना वै नन्दिकेश्वरः। तज्जन्मप्रभृतेर्ब्रह्मन् ! कल्पा वै सप्त सप्त च ॥९१॥

तत्राश्रमे महाभाग ! स्थित्वा त्वं तपसां निधे ! पुत्रेण परमप्रीतो मत्क्षेत्रे मत्समो भव ॥९२॥

योऽस्मिन् वृक्षे त्वया दृष्टः सोऽहमेव न संशयः। शालग्राम इति ख्यातो जातस्तेनैव वै ध्रुवम् ॥९३॥

---

त्यसपछि दर्शनका लागि चारैतिर भ्रमण गरेर थाकेका महर्षि शालङ्कायनले मेरो दर्शनको इच्छा गरी त्यहाँ विश्राम गरे। हे पृथिवी ! वैशाखको द्वादशीका दिन त्यहाँ म पूर्व फर्केको थिएँ र पश्चिम फर्केका मुनिले ॐकार मन्त्र लागेका ऋग्वेदका वचनहरूले मेरो स्तुति गरे। ती मुनिले पहिले जस्तै गरी विधिपूर्वक मेरो स्तुति गरे। त्यसपछि फेरि शालको रुखको पश्चिमपट्टि म पश्चिममुख गरेर बसेको थिएँ। ती मुनिले पूर्वमुख गरेर सामवेदका मन्त्रहरूले त्यहाँ मेरो स्तुति गरे। त्यसपछि म वृक्षको उत्तरतर्फ उत्तरमुख गरेर बसेको थिएँ। ऋषिले दक्षिण मुख गरेर अथर्ववेदका वचनद्वारा मेरो स्तुति गरे ॥७८-८३॥

हे पृथिवी ! यस प्रकार वेदका मन्त्रहरूद्वारा मुनिले स्तुति गरिएँ र उनको कर्मले प्रसन्न भएर उनलाई भने – हे ब्राह्मण ! तपाईंको तप र भक्तिपूर्ण स्तुतिले म प्रसन्न छु। तपाईंको मनमा जे छ, त्यो पवित्र वर माग्नुहोस्। हे पृथिवी ! यसप्रकार मैले सोधिएका शालको रुखमा आश्रय लिएका र सिद्ध भैसकेका ती मुनिले हात जोडेर मलाई भने – हे हरि ! तपाईंको आराधनाका लागि नै मैले तपस्या गरेँ। हे विष्णु ! म पर्वत र वन जंगलले भरिएकी सम्पूर्ण पृथिवीमा भ्रमण गरेँ, तर तीनै लोकमा दुर्लभ भएको हजुरको दर्शन दुर्लभ छ। हे परमेश्वर ! हजुरको दर्शनका लागि धेरै थाकेँ र ज्यादै हैरान भएँ। त्यसपछि यस शालको रुखमा दर्शन पाउने इच्छा गरेर तपाईंको स्तुति गर्दै समय बिताएँ र पुर्खाहरूका पुण्यले बल्लबल्ल देख्न पाएँ। हजुरले जुन वर माग्न भन्नुभयो, तर त्यस वरको अवधि दर्शनसम्म मात्र हुन्छ तर पनि मलाई शिवसमान छोरो नै वर दिनुहोस् ॥८४-८९॥

विष्णुले भन्नुभयो – हे शालङ्कायन ! शिवका कृपाबाट तपाईंको इच्छा पूर्ण भयो। तपाईंको दाहिने अङ्गबाट नन्दिकेश्वर नाम गरेका शिव प्रकट हुनुभयो। हे ब्राह्मण ! नन्दिकेश्वरको जन्मदेखि १४ कल्पहरू पूर्ण भएको मानिने छन्। हे तपस्याका खानि भएका भाग्यमानी मुनि ! तपाईंका छोरा नन्दिकेश्वरको आश्रममा छोरासँग ज्यादै खुशी भएर मेरो एकाकार हुनुहोस्। यो शालको रुखमा जो तपाईंले देख्नुभयो, त्योम नै हुँ, यसमा शङ्का छैन। यस कारण नै म निश्चय नै शालग्रामको नामले प्रसिद्ध छु। यो रहस्य महादेवले मात्र जान्नुहुन्छ ॥९०-९३॥

श्रीवराह उवाच

एतत् कोऽपि न जानाति विना देवं महेश्वरम्। इति तस्मै वरं दत्वा विष्णुरन्तर्हितोऽभवत् ॥९४॥
वृक्षं प्रदक्षिणीकृत्य जगाम स्वाश्रमं मुनिः। शालग्राम इति ख्यातं मत्क्षेत्रं परमं धरे ! ॥९५॥

इति श्रीकश्यपकुलतिलककाश्यपचरणोपासककश्यपगोत्रीयश्रीकाशीरामविरचिते
श्रीगण्डकीमाहात्म्ये त्रिवेणीवर्णनं नाम नवमोऽध्यायः ॥

---

श्रीवराहले भन्नुभयो – यसप्रकार ती शालङ्कायनमुनिलाई वर दिएर विष्णु अन्तर्धान हुनुभयो। मुनि पनि शालको वृक्षलाई प्रदक्षिणा गरेर आफ्नो आश्रम हरिक्षेत्रतिर लागे। हे पृथिवी ! यसप्रकार मेरो उत्तम क्षेत्र शालग्रामक्षेत्रको नामले प्रसिद्ध भयो ॥९४–९५॥

यसप्रकार कश्यपकुलका श्रेष्ठ काश्यपऋषिको चरणको उपासना गर्ने काश्यपगोत्रीय श्रीकाशीरामद्वारा रचित
गण्डकीमाहात्म्यमा नवौं अध्याय परिपूर्ण भयो ॥९॥

## दशौं अध्याय : त्रिवेणीमाहात्म्य

श्रीवराह उवाच

अथ ते वर्णयिष्यामि तीर्थानां परमं मम। तत्र तीर्थानि गुह्यानि पञ्चदश महान्ति च ॥१॥
तत्र विल्वप्रभं नाम गुह्यं क्षेत्रं परं मम। गुह्यानि तत्र चत्वारि क्रोशमात्रे यशस्विनि ! ॥२॥
तत्र स्नानं प्रकुर्वीत अहोरात्रोषितो नरः। चतुर्णामश्वमेधानां फलं प्राप्नोति निश्चितम् ॥३॥
अथात्र मुञ्चति प्राणान् मम कर्मसु निष्ठितः। अश्वमेधफलं भुक्त्वा ममलोके स मोदते ॥४॥
चक्रस्वामीति विख्यातं तत्र क्षेत्रं परं मम। योजनत्रयविस्तीर्णं चक्राङ्कितशिलामयम् ॥५॥
तत्र स्नात्वा विधानेन त्रिरात्रोपोषितो नरः। त्रयाणामपि तन्त्राणां फलं प्राप्नोति विश्चितम् ॥६॥
अथात्र मुञ्चति प्राणान् मम कर्मपरायणः। वाजपेयफलं भुक्त्वा मम लोकञ्च गच्छति ॥७॥
तत्र विष्णुपदं नाम क्षेत्रं गुह्यं परं मम। तिस्रो धाराः पतन्त्यत्र हिमकूटसमाश्रिताः ॥८॥
तत्र स्नानं तु कुर्वीत त्रिरात्रोपोषितो नरः। त्रयाणामतिरात्राणां फलं प्राप्नोति निष्कलम् ॥९॥
तत्रैव मुञ्चति प्राणान् मुक्तसङ्गो गतक्लमः। अतिरात्रफलं भुक्त्वा मम लोके महीयते ॥१०॥

---

श्रीवराहले भन्नुहुन्छ – अब म तिमीलाई तीर्थहरूमा उत्तम तीर्थ बताउनेछु। यस त्रिवेणीक्षेत्रमा ठूलाठूला १५ तीर्थहरू गुप्तरू पमा रहेका छन्। त्यहाँ विल्वप्रभ नाम गरेको उत्तम गुप्ततीर्थ छ। हे यशस्विनी ! जुन मानिसले ती चार तीर्थहरूमा दिनरात उपवास गरेर स्नान गर्छ त्यसले चारवटा अश्वमेधगज्ञ गरेको फल पाउँछ। मेरो पूजा आदि कर्ममा श्रद्धा राख्ने जुन मानिस ती ४ तीर्थहरूमा प्राणत्याग गर्छ त्यो मानिस अश्वमेधयज्ञको फल भोगेर वैकुण्ठलोकमा रमाउँछ ॥१–४॥

त्यस त्रिवेणी क्षेत्रमा तीन योजन फैलिएको र चक्राङ्कित शालग्रामहरू भएको चक्रस्वामी नामले प्रसिद्ध मेरो उत्तम धाम छ। त्यस चक्रस्वामीतीर्थमा विधिअनुसार नुहाएर तीन रातसम्म उपवास गर्ने मानिसले निश्चय नै शाक्त, वैष्णव र शैवतन्त्रहरूको फल पाउँछ। मेरो कर्ममा परायण जुन मानिसले मेरो यो चक्रस्वामीतीर्थमा प्राणत्याग गर्छ,त्यो वाजपेय यज्ञको फल भोगेर मेरो लोकमा प्राप्त हुन्छ ॥५–७॥

त्यस त्रिवेणीक्षेत्रमा विष्णुपद नाम गरेको मेरो उत्तम र गोप्य क्षेत्र छ, यहाँ हिमकूट नामको पर्वतको आश्रय लिएका तीन धाराहरू खस्छन्। जुन मानिसले त्यस विष्णुपद तीर्थमा तीन रातसम्म उपवास गरेर नुहाउँछ, त्यसले तीनवटा अतिरात्र व्रतहरूको फल पाउँछ। जुन मानिसले सबै संसर्ग छोडेर यहाँ प्राणत्याग गर्छ, त्यो कष्ट नपाई अतिरात्रव्रतको फल भोगेर मेरो लोक वैकुण्ठमा गई सम्मानित हुन्छ ॥८–१०॥

तत्र कालीह्रदं नाम गुह्यं क्षेत्रं परं मम। अत्र चैव ह्रदस्रोतो बदरीवृक्षनिःसृतम् ॥११॥
तत्र स्नानं तु कुर्वीत षट्कालोपोषितो नरः। नरमेधस्य यज्ञस्य फलं प्राप्नोति मानवः ॥१२॥
तत्र शङ्खप्रदं नाम गुह्यं क्षेत्रं परं मम। यत्र वै कम्पते स्रोतो द्वादश्यामर्द्धरात्रके ॥१३॥
गदाकुण्डमिति ख्यातं तस्य क्षेत्रस्य दक्षिणे। तत्र स्नानं तु कुर्वीत त्रिरात्रोपोषितो नरः ॥१४॥
वेदवेदान्तपाठानां फलं प्राप्नोति मानवः।
तत्र वै मुञ्चति प्राणान् कृतकृत्यो गुणान्वितः। गदापाणिर्महाकायो मम लोके प्रपद्यते ॥१५॥
अन्यं चाग्निप्रभं नाम गुह्यं क्षेत्रं परं मम। धारा पतति तत्रैका पूर्वोत्तरसमाश्रिता ॥१६॥
यस्तत्र कुरुते स्नानं चतुर्भक्तोषितो नरः। अग्निष्टोमात् पञ्चगुणं फलं प्राप्नोति मानवः ॥१७॥
अथात्र मुञ्चति प्राणान् मम कर्मसु निष्ठितः। अग्निष्टोमफलं भुक्त्वा मम लोकं प्रपद्यते ॥१८॥
हेमन्ते चोदकं तप्तं ग्रीष्मे भवति शीतलम् ॥१९॥
तत्र सर्वायुधं नाम गुह्यं क्षेत्रं परं मम। पतन्ति सप्तस्रोतांसि हिमवन्निःसृतानि वै ॥२०॥
तत्र स्नानं प्रकुर्वीत सप्तरात्रोषितो नरः। राजा भवति कल्याणि ! सर्वायुधकलान्वितः ॥२१॥
अथ वै मुञ्चति प्राणान् मम क्षेत्रे सुनिश्चितः। स भक्त्वा राजभोगांश्च मम लोकञ्च गच्छति ॥२२॥
तत्र देवप्रभं नाम क्षेत्रं गुह्यं परं मम। धाराः पञ्चमुखास्तत्र पतन्ति गिरिसंश्रिताः ॥२३॥
तत्र स्नानं प्रकुर्वीत षड्रात्रोपोषितो नरः। चतुर्णामपि वेदानां याति पारं न संशयः ॥२४॥
अथात्र मुञ्चति प्राणान् लोभमोहविवर्जितः। समाप्य वेदकर्माणि मम लोके महीयते ॥२५॥
गुह्यं विद्याधरं नाम तत्र क्षेत्रं परं मम। पञ्चधाराः पतन्त्यत्र हेमकूटविनिःसृताः ॥२६॥

---

त्यस त्रिवेणीक्षेत्रमा कालीह्रद नामको मेरो उत्तम र गोप्य क्षेत्र छ, यस कालीह्रदको मुहान बयरको रुखबाट प्रवाहित भएको छ। जुन मानिसले यस कालीह्रदतीर्थमा ६ पटकसम्म उपवास गरेर नुहाउँछ, त्यस मानिसले नरमेधयज्ञको फल पाउँछ। त्यस त्रिवेणीक्षेत्रमा शंखप्रद नाम गरेको मेरो उत्तम र रहस्यमय क्षेत्र छ, जहाँ द्वादशीका दिन आधारातमा पानीको वेग थर्थराउँछ ॥११-१३॥

त्यस क्षेत्रको दक्षिणपट्टि गदाकुण्ड नामले प्रसिद्ध मेरो उत्तम र गोप्य क्षेत्र छ। जुन मानिसले तीन रात उपवास गरेर गदाकुण्डमा स्नान गर्छ त्यसले सारा वेद र वेदान्तहरू पाठ गरेको फल प्राप्त गर्दछ। जुन मानिसले यस गदाकुण्डमा प्राण त्याग गर्छ त्यो मानिस सत्यकर्मा, गुणी, गदाधारी, महाकाय भई मेरो धाममा प्राप्त हुनेछ। त्रवेणीक्षेत्रमा अग्निप्रभ नाम गरेको मेरो अर्को उत्तम र गोप्य क्षेत्र छ। त्यहाँ आग्नेय दिशातर्फ एउटा जलधारा प्रवाहित हुन्छ। चार छाक उपवास गर्ने जुन मानिस त्यस अग्निप्रभ तीर्थमा स्नान गर्छ त्यो मानिसले अग्निष्टोम यज्ञ सम्पन्न गरेभन्दा पाँचगुणा बढी फल पाउँछ। मेरो कर्ममा श्रद्धा राख्ने जुन मानिसले यस अग्निप्रभ तीर्थमा प्राण त्याग गर्छ, त्यो मानिस अग्निष्टोम यज्ञको फल भोग गरी मेरो धाममा प्राप्त हुन्छ ॥१४-१८॥

त्यस विष्णु भगवान्मा श्रद्धा गर्ने मानिसका लागि हेमन्तऋतुको पानी तातो र ग्रीष्मऋतुको पानी चीसो बन्दछ। त्यस त्रिवेणीक्षेत्रमा सर्वायुध नाम गरेको मेरो उत्तम र गोपनीय तीर्थ रहेको छ। त्यहाँ हिमालबाट बगेका ७ ओटा पानीका वेगहरू खस्छन्। हे पृथिवी ! जुन मानिसले सातरात उपवास गरेर त्यस सर्वायुध तीर्थमा स्नान गर्छ, त्यो मानिस सबै प्रकारका अस्त्रहरूमा सीप हासिल गरेर राजसिंहासनमा आरोहण गर्दछ। जुन मानिसले मेरो क्षेत्रमा राम्रो निश्चय लिएर प्राण त्याग गर्छ, त्यो मानिस राजाको सुखभोग गरेर मेरो लोक वैकुण्ठमा प्राप्त हुन्छ ॥१९-२२॥

त्यस त्रिवेणीक्षेत्रमा देवप्रभ नाम गरेको मेरो रहस्यमय तीर्थ छ। त्यहाँ पर्वतबाट पाँचमुखहरू भएका जलधाराहरू खस्छन्। जुन मानिसले ६ रात उपवास गरेर देवप्रभक्षेत्रमा स्नान गर्छ, त्यो मानिस ४ वेदमा पारङ्गत हुन्छ, यसमा कुनै सन्देह छैन। जुन मानिस लोभ र मोह छाडेर त्यहाँ प्राणत्याग गर्छ, त्यो मानिस वेदका कर्महरू पूर्ण गरेर मेरो लोकमा शोभायमान हुन्छ। त्यस त्रिवेणीक्षेत्रमा विद्याधर नामक मेरो उत्तम र गुह्य क्षेत्र छ। त्यहाँ हेमकूट पर्वतबाट निस्केका ५ जलधाराहरू खस्छन् ॥२३-२६॥

यस्तत्र कुरुते स्नानमेकरात्रोषितो नरः। याति विद्याधरं लोकं कृतकृत्यो न संशयः ॥२७॥
अथात्र मुञ्चति प्राणान् वीतरागो गतक्लमः। भुक्त्वा वैद्याधरान् भोगान् मम लोके स गच्छति ॥२८॥
तत्र पुण्यवती नाम गुह्यं क्षेत्रं परं मम। शिलाकुण्डलताकीर्णाऽप्सरोगन्धर्वसेविता ॥२९॥
तत्र स्नानं प्रकुर्वीत चाष्टभक्तोषितो नरः। रमते सप्तद्वीपेषु स्वच्छन्दगमनो नरः ॥३०॥
अथात्र मुञ्चति प्राणान् मम कर्मानुसारकः। सप्त द्वीपान् समुत्सृज्य मम लोकं स गच्छति ॥३१॥
गन्धर्वीमिति विख्यातं तत्र क्षेत्रं परं मम। एका धारा पतत्यत्र पश्चिमां दिशमाश्रिता ॥३२॥
तत्र स्नानं प्रकुर्वीत चतूरात्रोषितो नरः। मोदते लोकपालेषु स्वच्छन्दगतिको नरः ॥३३॥
अथात्र मुञ्चति प्राणान् मम भक्त्या व्यवस्थितः। लोकपालान् समुत्सृज्य मम लोकाय गच्छति ॥३४॥
तत्र देवह्रदं नाम मम क्षेत्रं वसुन्धरे। यत्र क्रान्तासि मे भूमे ! बलेर्यज्ञविनाशनात् ॥३५॥
स ह्रदो वरदश्श्रेष्ठो मनोज्ञः सुखशीतलः। अगाधसौख्यदश्चापि देवानामपि दुर्लभः ॥३६॥
मत्स्याश्चक्राङ्कितास्तत्र पश्यन्ति पुण्यकर्मणा। द्वादशीद्वादशीष्वेव चतुर्विंशतिकेष्वपि ॥३७॥
सौवर्णानि च पद्मानि दृश्यन्ते भास्करोदये। यावन्मध्यदिनं तत्र स्नात्वा यान्ति दिवं नराः ॥३८॥
दशभक्तोषितः स्नात्वा शुद्धयेद् वाक्कायजैर्मलैः। दशानामश्वमेधानां प्राप्नोत्यविकलं फलम् ॥३९॥
अथात्र मुञ्चति प्राणान् मद्भक्तो धर्मसंस्थितः। अश्वमेधफलं भुक्त्वा भूमे ! मत्समतां व्रजेत् ॥४०॥
तदूर्ध्वं गण्डकीनद्योः संभेदो देवदुर्लभः। माहात्म्यं वर्णितं तस्य प्रागेव परमं सुखम् ॥४१॥
एतत्ते सर्वमाख्यातं गण्डकीक्षेत्रमुत्तमम्। आरभ्य मुक्तिक्षेत्राच्च क्षेत्रं द्वादशयोजनम् ॥४२॥
शालग्रामस्वरूपेण मया यत्र स्थितं स्वयम्। स्वभक्तानां विशेषेण परमानन्ददायकम् ॥४३॥
गुह्यानां परमं गुह्यं प्रत्यक्षादिप्रमाणकैः। सुबोधं बुद्धिमत्सेव्यं सर्वशास्त्रेषु वर्णितम् ॥४४॥

---

जुन मानिसले एकरात उपवास गरेर त्यहाँ स्नान गर्छ त्यो मानिस सबै कर्म पूर्णगरेर विद्याधर देवजातिविशेषको लोकमा पुग्छ, यसमा सन्देह छैन। वैराग्य उत्पन्न भई कष्टको अनुभव नगर्ने जुन मानिसले जहाँ प्राण त्याग गर्छ, त्यो मानिस विद्याधर जातिका भोगहरू भोगेर मेरो धाममा प्राप्त हुन्छ।त्यस त्रिवेणीक्षेत्रमा ढुङ्गाका कुण्डहरू र लहराहरूले व्याप्त भएको गन्धर्व र अप्सराद्वारा सेवित पुण्यवती नाम गरेको मेरो उत्तम र रहस्यमय धाम छ॥२७-२९॥

जुन मानिसले ८ छाक उपवास गरेर त्यहाँ स्नान गर्छ, त्यो मानिस ७ द्वीपहरूमा स्वच्छन्द भ्रमण गरी रमाउँछ। मेरो कर्मको अनुसरण गर्ने जुन मानिसले यहाँ प्राणत्याग गर्छ, त्यो मानिस ७ द्वीप भएकी पृथिवीको परित्याग गरेपछि मेरो लोक प्राप्त गर्छ। यस त्रिवेणीक्षेत्रमा गन्धर्व नामले प्रसिद्ध मेरो उत्तम क्षेत्र छ। त्यहाँ पश्चिम दिशाबाट एउटा पानीको धारा प्रवाहित हुन्छ। जुन मानिस चाररात भोकै बसेर यहाँ स्नान गर्छ, त्यो मानिस आफुखुसी हिँड्ने शक्ति प्राप्त गरेर लोकपालहरूका माझमा सहर्ष बस्न पाउँछ॥३०-३३॥

यस गन्धर्वक्षेत्रमा मेरो भक्तिमा स्थिर भई कुनै मानिसले प्राणत्याग गर्छ भने त्यो मानिस इन्द्र आदि लोकपालका लोक छाडी मेरो लोकमा प्राप्त हुन्छ। हे पृथिवी ! त्यहाँ देवह्रद नाम गरेको मेरो क्षेत्र छ। जहाँ मैले बलिको यज्ञ विध्वंस गरेपछि पहिलो पाउ तिमीमाथि राखेको थिएँ। त्यो देवह्रद वरदायक छ, सुन्दर एवं शीतल छ, अगाध सुखप्रदान गर्न समर्थ छ र देवताहरूका लागि पनि दुर्लभ छ। त्यहाँ माछाहरू पनि चक्रको चिह्न भएका छन्। मानिसहरूले आफ्ना पुण्यकर्मले प्रत्येक द्वादशी तिथि र प्रत्येक चौबीसौँ दिनमा चक्रांकित माछाहरूको दर्शन पाउँछन्। त्यस गण्डकीह्रदमा सूर्य उदाएको बेलामा सुनका कमलहरू देखिन्छन्। मध्यदिनमा त्यहाँ नुहाउँने मानिसहरू स्वर्ग जान्छन्। १० छाक भोकै बसी नुहाउने मानिस वाणी र शरीरबाट भएका अपराधबाट मुक्त हुन्छ॥ ३४-३९॥

हे पृथिवी ! यसपछि धर्मात्मा मेरो भक्त यहाँ प्राणत्याग गर्छ भने अश्वमेध यज्ञको फल भोगेर म समान भई विष्णुपदमा पुग्छ। त्यो भन्दा माथि रहेको काली र त्रिशूलीनदीहरूको सङ्गम देवघाट देवताहरूका लागि पनि दुर्लभ र महत्त्वपूर्ण छ। त्यस देवघाट क्षेत्रको अपूर्व आनन्ददायक महिमा पहिले बताइसकिएको छ। हे पृथिवी ! शालग्रामका रूपमा मैले नै बास गरेको विषेश गरेर आफ्ना भक्तहरूका लागि ज्यादै उत्तम आनन्द दिने गोप्यहरूमा पनि गोप्य प्रत्यक्ष अनुमान शब्द आदि प्रमाणहरूद्वारा बुझ्न सकिने, मनीषीहरूद्वारा सेवनीय, सबै शास्त्रहरूमा वर्णन गरिएको र मुक्तिक्षेत्रदेखि हरिक्षेत्रसम्म ४८ कोश लामो यो उत्तम गण्डकीक्षेत्रको विषयमा बताएँ॥४०-४४॥

एतत् क्षेत्रं धरे ! पूर्वकल्पे च प्रथमे मया। षट्त्रिंशत्कसहस्राणां निर्मितश्चाश्रमः स्वकः ॥४५॥
ममाज्ञयाप्यनेकानि क्षेत्राणि निर्मितानि च। अजादिभिः स्वभक्तानामुद्धत्यै भूमिमण्डले ॥४६॥
एतत् त्रिवेणीमाहात्म्यं यः शृणोति नरोत्तमः। स याति परमं स्थानं तत्र देवो महेश्वरः ॥४७॥

इतिश्रीकश्यपकुलतिलककाश्यपचरणोपासककश्यपगोत्रीयश्रीकाशीरामविरचिते
श्रीगण्डकीमाहात्म्ये त्रिवेणीवर्णनं नाम दशमोऽध्यायः ॥

---

हे पृथिवी ! ३६ हजार कल्पमध्ये प्रथम कल्पमा मैले यसै क्षेत्रमा आफ्नो दिव्य आश्रम बनाएँ। मेरो आज्ञाद्वारा आफ्ना भक्तहरूको उद्धारका निमित्त ब्रह्मा आदि देवताहरूले यस पृथिवीमण्डलमा अनेकौं क्षेत्रहरू पनि तयार गरे। जुन उत्तम पुरुषले यो त्रिवेणी माहात्म्य सुन्छ, त्यसले महादेव रहेको उत्तम स्थान प्राप्त गर्छ ॥४५-४७॥

यसप्रकार कश्यपकुलका श्रेष्ठ काश्यपऋषिको चरणको उपासना गर्ने काश्यपगोत्रीय श्रीकाशीरामद्वारा रचित
गण्डकीमाहात्म्यमा दसौं अध्याय परिपूर्ण भयो ॥१०॥

## एघारौं अध्याय : मुकुन्देश्वर र हरिक्षेत्रवर्णन

ब्रह्मन् यद् देवनद्योस्तु संभेदे वर्तते शिवः। मुकुन्देश्वरपाषाणः कथं तत्राभवत् किल ? ॥१॥

श्रीभगवच्छर्मोवाच

शृणु विप्र ! प्रवक्ष्यामि यच्च मां परिपृश्च्छसि। चरितं शिवभक्तस्य राजपुत्रस्य चोत्तमम् ।२॥

श्रीकाशीराम उवाच

गण्डकीगर्भदेशस्थो पालपीयो महामतिः। राजा मुकुन्दसेनो हि गोब्राह्मणहिते रतः ॥३॥
पण्डितः शस्त्रशास्त्रज्ञो युवावयवसुन्दरः। व्यूढोरस्को बृहद्बाहुर्विशालभाललोचनः ॥४॥
शिवभक्तो विष्णुभक्तो राजनीतौ विचक्षणः। दयालुर्दानशीलश्च विक्रान्तो रणकर्कशः ॥५॥
सत्सङ्गनिरतो नम्रः कुमारो मारमर्दनः। स्नापयित्वा शिवं देवं पञ्चगव्येन सर्वदा ॥६॥
भुञ्जानो भोजनं भव्यो भूदेवादेशसंस्थितः। स गत्वा कार्तिके मासे द्विजवृन्दसमन्वितः ॥७॥
देवघट्टे महाक्षेत्रे शुभे हरिहरस्थले। चकारोद्यापनं तत्र स्वव्रतस्य यथाविधिः ॥८॥

---

श्रीभगवत् शर्माले भने - हे ब्राह्मण ! त्रिशूली र गण्डकी नदीहरूको सङ्गम देवघाटमा विराजमान शिव कसरी मुकुन्देश्वर शिवलिंगका नामले प्रसिद्ध हुनुभयो ? ॥१॥

काशीरामले भन्दछन् - हे ब्राह्मण ! शिवभक्त राजकुमारको उत्तम चरित्रबारे तपाईले सोध्नुभएको छ, म तपाईंको समक्ष त्यो उत्तम चरित्र बताउँछु, सुन्नुहोस्। गण्डकीदेश पाल्पामा जन्मेका मुकुन्दसेन नाम गरेका बुद्धिमान् राजकुमार गाई र ब्राह्मणको हितैषी, पण्डित, शस्त्र र शास्त्रका ज्ञाता, युवक, सुन्दर छाति, पाखुरा, निधार र आँखाहरूविशाल भएका शिव र विष्णुका भक्त, राजनीतिका ज्ञाता, दयालु, दानी, पौरखी, कठोर लडाई गर्ने, सज्जनहरूको संगत गर्ने, नम्र, कामदेवभन्दा पनि सुन्दर, सधैं पञ्चगव्यले शिवलाई नुहाएर मात्र खाने, भव्य र ब्राह्मणहरूको आदेश पालना गर्ने पनि थिए। ती राजकुमारले धेरै ब्राह्मणहरूका साथ कात्तिक महिनामा हरिहरक्षेत्र नामक पवित्र महाधाम देवघाटमा गएर आफ्नो व्रतको विधिपूर्वक सांगता गरे ॥२-८॥

ददौ गा विप्रमुख्येभ्यः सालङ्काराः सवत्सकाः । नानारत्नानि वस्त्राणि पात्रकम्बलकानि च ॥९॥
चर्मकम्बलच्छत्राणि यतिभ्यः प्रददौ नृपः । रात्रौ महोत्सवो वीरो निविष्टो व्याघ्रचर्मणि ॥१०॥
प्रसुप्ते निशीथे लोके शुश्राव शम्भुनोदिताम् । सुभद्रां भारतीमेतां राजपुत्रः खमण्डले ॥११॥
उत्तिष्ठोत्तिष्ठ भद्रं ते गृहाणासिं मयार्पितम् । चक्रवर्ती भवाशु त्वमनेन मत्प्रसादतः ॥१२॥
श्रुत्वेति चकितो वीरः किमेतदिति संभ्रमात् । उत्थितोऽग्रे गतं भूमावपश्यदसिमुत्तमम् ॥१३॥
तं गृहीत्वा युवा विप्रान् बोधयामास सत्वरः । उदन्तं सकलं तेभ्यो यावद्देवीं नृपस्तथा ॥१४॥
तावदग्रे शुभं लिङ्गमपश्यत् प्राक्तनं किल । विप्रानाह च भूदेवाः ! किमेतल्लिङ्गमुत्तमम् ॥१५॥
तमूचुस्ते महाराज ! प्रसादोऽयं हरस्य ते । कुरु पूजां महाभाग ! लप्स्यसे राज्यमुत्तमम् ॥१६॥
तानुवाच नृपो विप्रान् नाम्ना केन प्रपूज्यते । ऊचुस्ते नृपतिं राजन् ! द्रष्टाऽस्य प्रथमो भवाम् ॥१७॥
तथापि शिवभक्तोऽसि नृपत्वादच्युतांशकः । अतस्त्वन्नामधेयेन लिङ्गनामाऽभिधीयते ॥१८॥
पूज्यतां परया भक्त्या मुकुन्देश्वरसंज्ञया । दद्याद् भुक्तिञ्च मुक्तिञ्च स्वयम्भूः शम्भुरेष वै ॥१९॥
तथैव पूजायामास विप्रादेशात् स भूपतिः । गृहीत्वा तमसिं राजा प्रयाणाय समाचरत् ॥२०॥
पूर्वं वराहक्षेत्रान्तं मुक्तिक्षेत्रान्तमुत्तरम् । पश्चिमं रुरुक्षेत्रान्तं हरिक्षेत्रावधीत्यवाक् ॥२१॥
एतावन्मण्डलं जित्वा चक्रवर्ती बभूव सः । पर्वते मध्यदेशे च नैपाले च धराधिपः ॥२२॥
ददौ ग्रामांश्च क्षेत्राणि ब्राह्मणेभ्यो महामनाः । चारणेभ्यो यतिभ्यश्च सहस्राणि शतानि च ॥२३॥
गजानश्वान्रथान्धेनूर्ददौ राजा सहस्रशः । देवतायतनान्यत्र तीर्थे तीर्थे चकार सः ॥२४॥
ब्रह्मण्यो ब्राह्मणाधीनो बभूवाऽसौ चतुर्भुजः । चारुवाक् चतुरश्चैव शङ्खचक्रासिभृत् कदा ॥२५॥
मकुवानीति वंशोऽयं तेन लोके प्रकाशितः । तस्य नाम्ना महादेवो मुकुन्देश्वरसंज्ञितः ॥२६॥

---

राजकुमार मुकुन्दसेनले बाच्छा बाच्छीहरूसँगै सिँगारिएका गाईहरू, नानाथरी रत्न कपडा भाँडा र कम्बलहरू पनि उत्तम ब्राह्मणका हातमा दिए । राजा मुकुन्दसेनले जोगीहरूलाई छाला कम्बल र छाताहरूदान गरे, बाघको छालामा बसेर विशेष श्रद्धाका साथ उत्सव मनाउँने वीर राजकुमारले रातमा दुनियाँ निदाउँदा आकाशमण्डलमा शिवले उच्चारण गरेको यो पवित्र बोली सुने – हे राजकुमार ! उठ उठ तिम्रो कल्याण होस् । मैले अर्पण गरेको तरवार लेऊ र मेरो कृपाद्वारा यस तरवारद्वारा शत्रु जितेर तिमी चाडै नै चक्रवर्ती राजा होऊ ॥९–१२॥

यस्तो आकाशवाणी सुनेर विस्मित भएका वीर राजकुमार मुकुन्दसेनले यो के हो ? भनेर हतार गर्दै साथ उठेर आफ्ना अगाडि भुईंमा रहेको उत्तम खड्ग दर्शन गरे । युवक राजाले त्यो तरवार तुरुन्त लिएर आकाशवाणीसम्मको सारा वृत्तान्त ब्राह्मणहरूलाई बताए । यतिखेर नै राजाले आफ्नो अगाडि नै पुरानो र पवित्र शिवलिङ्ग देखेर ब्राह्मणसँग सोधे – हे ब्राह्मण हो ! यो उत्तम लिङ्ग के हो ? ॥१३–१५॥

ती ब्राह्मणहरूले राजालाई भने – महाराज यो तपाईंमाथिको भगवान् शिवको कृपाप्रसाद हो । हे भाग्यशाली राजा ! तपाईंले यस उत्तम लिंगको पूजा गर्नुहोस् । त्यसबाट तपाईंले उत्तम राज्य पाउनुहुनेछ ॥१६॥

राजाले ती ब्राह्मणहरूलाई भने – मैले यस लिंगको कुन नाम राखी पूजा गर्नुपर्दछ ? तिनीहरूले पनि राजालाई भने – हे राजा ! तपाईं नै यस लिङ्गको प्रथम दर्शक हुनुहुन्छ । तपाईं शिवभक्त र राजा पनि भएकाले विष्णुका अंश पनि हुनुहुन्छ । त्यसैले तपाईंको नाम मुकुन्दसेनबाट नै शिवलिङ्गको नाम मुकुन्देश्वर भनी नामकरण गरिन्छ । ठूलो भक्तिका साथमा मुकुन्देश्वर शिवलिङ्गको पूजा गर्नुहोस् । पूजा गरेपछि भगवान् शिवले भुक्ति र मुक्ति दुबैप्रदान गर्नुहुनेछ ॥१७–१९॥

राजा मुकुन्दसेनले ब्राह्मणहरूको आदेश पाएर मुकुन्देश्वर नामबाट नै शिवलिङ्गको पूजा गरे । भगवान् शिवले दिनुभएको तरवार लिएर राजा दिग्विजयका लागि प्रस्थान आरम्भ गरे । नेपालको पर्वत र तराईक्षेत्रहरूमा पूर्वतर्फ वराहक्षेत्रसम्म उत्तरतर्फ मुक्तिक्षेत्रसम्म पश्चिमतर्फ रुरुक्षेत्रसम्म र दक्षिणतर्फ हरिक्षेत्र गण्डकी गङ्गासङ्गमसम्म भूमण्डल जितेर राजा मुकुन्दसेन सम्राट भए ॥२१–२२॥

महामना मुकुन्दसेनले ब्राह्मणहरूलाई गाउँ र खेत, स्तुतिपाठक र जोगीहरूलाई सयौं र हजारौं हात्ती, घोडा, रथ र गाईहरूप्रदान गरे । त्यसपछि उनले नेपालका तीर्थहरूमा हजारौं देवालय निर्माण गरे । ब्राह्मणका सेवक, ब्राह्मणहरूको अधीनमा रहने, मधुरभाषी, चतुर राजा कहिलेकाहीं शङ्ख, चक्र र तरवार धारण गरेर चतुर्भुज विष्णुका रूपमा देखिए । राजा मुकुन्दसेनले संसारमा मकवानी भन्ने सेनवंश प्रकाशित गरे । ती राजाको नामबाट मुकुन्देश्वर नाम गरेका महादेव पनि देवघाटमा विराजमान हुनुभयो ॥२३–२६॥

श्रीभगवच्छर्मोवाच

भगवन् यद्धरिक्षेत्रं भवता कथितं खलु। कुत्रास्ते च कथं श्रेष्ठं माहात्म्यं तस्य चोच्यताम् ॥२७॥

श्रीकाशीराम उवाच

गण्डकीगङ्गयोर्नद्योः सम्भेदो यत्र जायते। तदेव हरिक्षेत्रञ्च महापातकनाशनम् ॥२८॥
प्रथमं गण्डकी श्रेष्ठा सर्वदेवप्रसूः शुभा। अपरा स्वर्णदी साक्षाद् विष्णुपादोदकात्मिका ॥२९॥
उभे विष्णोः कले नद्यौ तयोः प्रेम्णा तदा हरिः। तयोः सम्भेददेशे च वसते भक्तवत्सलः ॥३०॥
ददाति भुक्तिं मुक्तिं च भक्तेभ्यो भवभावनः। विना विष्णोः प्रसादाच्च तत्क्षेत्रं न व्रजेन्नरः ॥३१॥
तत्र स्नानादिकं कृत्वा लभते वाञ्छितं फलम्। तत्र श्राद्धञ्च यः कुर्याद् विधिवत् पञ्चपर्वसु ॥३२॥
नरकात् पितृवर्गञ्च वैकुण्ठं स नयेद् ध्रुवम्। तत्र प्राणान् विमुञ्च्यापि विष्णुसायुज्यमाप्नुयात् ॥३३॥
तीर्थे शतगुणं पुण्यं गृहदानस्य कीर्तितम्। ततः शतगुणं प्रोक्तं महानद्योर्महर्षिभिः ॥३४॥
ततः शतगुणं प्रोक्तं महानद्योस्तु सङ्गमे। ततः शतगुणं प्रोक्तं गङ्गायां गण्डकीतटे ॥३५॥
गण्डकीगङ्गयोर्योगे फलं प्रोक्तमनन्तकम्। इत्थं द्विजेन्द्र ! माहात्म्यं गण्डक्याः परमं शुभम् ॥३६॥
सन्ति तीर्थान्यनेकानि भारतेऽस्मिन् पदे पदे। वर्णाश्रमेभ्यो भ्रष्टानां पातकक्षालनाय वै ॥३७॥
स्वकर्मनिरतानाञ्च वेदमार्गानुसारिणाम्। साधूनां गण्डकीतीर्थं ब्रह्मपुत्रैर्निरूपितम् ॥३८॥
कायिकं वाचिकं तत्र मानसं गण्डकीतटे। कुरु कर्माणि विप्रेन्द्र भज विष्णुं शिवं खलु ॥३९॥
अत्रैव गोशतं कार्यं धान्यपर्वतमेव च। देवतायतनं चैव यथाविभवविस्तरम् ॥४०॥
इत्थं प्रणोदितो विप्रः काशीराममनीषिणा। तत्सर्वं गण्डकीतीरे यथाशक्ति समाचरत् ॥४१॥
क्षेत्रस्य मध्यभागे च गण्डक्या देवतालयम्। गण्डक्योर्गुप्तसंभेदे देवीस्थानेऽप्यजीघटत् ॥४२॥
भारद्वाजकुलोत्पन्नो यजुर्वेदोपपाठकः। मतिमान् भानदो मान्यो देवब्राह्मणपूजकः ॥४३॥
दिव्यलोकावतीदेवीपरशुरामयोः सुतः। विप्रः श्रीभगवच्छर्मा प्रख्यातो दानशीलवान् ॥४४॥

---

भगवत् शर्माले भने – हे भगवन् ! तपाईंले जुन हरिक्षेत्रको कुरा गर्नुभयो, त्यो कहाँ छ र कसरी श्रेष्ठ भयो? त्यसको माहात्म्य पनि बताउनुहोस् ॥२७॥

श्रीकाशीरामले भने – जुन ठाउँमा गण्डकीनदी र गङ्गानदीको सङ्गम हुन्छ, त्यसलाई नै ठूला ठूला पापनाश गर्ने हरिक्षेत्र भनी सम्बोधन गरिन्छ। सबैभन्दा पहिले सबै देवताहरूलाई जन्म दिने गण्डकी नदी सर्वोत्तम मानिएकी छन् भने अर्की विष्णुको चरणबाट उत्पन्न भएकी गङ्गाजी नै यस संसारमाश्रेष्ठ र पवित्र मानिन्छन्। दुबै नदी विष्णुका कला हुन् र भक्तहरूलाई माया गर्ने भगवान् हरि दुबैको प्रेमले सधैँ तिनीहरूको सङ्गममा विराजमान हुनुहुन्छ। संसारलाई सृष्टि गर्ने भगवान् हरिले हरिहरक्षेत्रमा रहेर भक्तहरूलाई भुक्ति र मुक्ति दुबै दिनुहुन्छ। मनुष्य विष्णुको कृपाविना त्यस हरिक्षेत्रमा जान समर्थ हुँदैन। भक्तले हरिहरक्षेत्रमा स्नान आदि गरेर चिताएको फल पाउँछ। जुन मानिसले त्यहाँ पाँच पर्वहरूमा विधिपूर्वक श्राद्ध गर्छ, निश्चय नै त्यसले पितृहरूलाई नरकबाट वैकुण्ठ लैजान्छ। जुन मानिसले हरिहरक्षेत्रमा प्राणत्याग गर्दछ, त्यो विष्णुको स्वरूपमा एकाकार हुन्छ ॥२९-३३॥

महर्षिहरूले तीर्थमा गृहदान गरेको पुण्य १०० गुना र महानदीहरूमा गृहदान गरेको पुण्य त्योभन्दा १०० गुना बढी हुने कुरा बताएका छन्। महानदीहरूको सङ्गममा त्योभन्दा १०० गुना र गङ्गा र गण्डकीको तीरमा त्यो भन्दा पनि १०० गुना बढी पुण्य हुने कुरा बताएका छन्। गण्डकी र गङ्गाको सङ्गममा पुण्यकर्म र श्राद्ध गरेको फल अझ अनन्त हुने कुरा बताएका छन्। हे ब्राह्मण ! यसरी गण्डकीको माहात्म्य पवित्र र उत्तम छ। यस भारतवर्षमा वर्ण र आश्रमबाट पतित भएका मनुष्यहरूको पाप पखाल्नका लागि नै पाइला पाइलामा अनेक तीर्थहरूरहेका छन्। ब्रह्माका छोराहरूले आफ्नो कर्ममा लागेका र वेदको मार्गको अनुसरण गर्ने सज्जनहरूका लागि गण्डकीतीर्थलाई नै सर्वोत्तम तीर्थ मानेका छन् ॥३४-३८॥

हे उत्तम ब्राह्मण ! गण्डकीको किनारमा शरीर, वचन र मनले उत्तम कर्म गर अनि विष्णु र शिवको निश्चय नै भजन गर। यही गण्डकीको तीरमा आफ्नो सम्पत्तिअनुसार सय गाई, धान्यपर्वत र देवमन्दिरको निर्माण गर्नुपर्दछ। यसप्रकार काशीराम नामका विद्वान्‌द्वारा अभिप्रेरित ब्राह्मण भगवत् शर्माले आफ्नो शक्ति अनुसार गण्डकीको तीरमा गोदान, धान्यपर्वत र देवमन्दिरको निर्माण गरे। गण्डकीक्षेत्रको माझमा गण्डकीनदीहरूको गुप्त दोभानमा र देवीस्थानमा पनि देवताको मन्दिर बनाए। भारद्वाजकुलमा जन्मेका, शुक्लयजुर्वेदाध्यायी, बुद्धिमान्, मान दिने, मान पाएका, देवता र ब्राह्मणरुको पूजा गर्ने र दानी स्वभाव भएका ब्राह्मण भगवत्शर्मा दिव्यलोकावती देवी र परशुरामका छोराका रूपमा प्रसिद्ध छन् ॥३९-४४॥

गण्डकीक्षेत्रवासी च सत्कर्मभिरुचिः शुचिः। परद्रव्यान्नपत्नीषु निर्लोभः कुलदीपकः ॥४५॥
तस्य प्रश्ने महायोगे सुवर्णकलशोपमे। दृढभक्तिमहापीठसंस्थिते गौरवाद्धरेः ॥४६॥
वराहस्य मुखोद्‌गारसुधाधारा धरागता। सोद्धृता काशीरामेण मधुमक्षिकयेव च ॥४७॥
स्वमुखेनाक्षयानन्तः पवित्रः साधुप्रीतये। महिमैष महानद्या गण्डक्यास्तत्र धारितः ॥४८॥
पिबन्तु साधवो नित्यं तिष्ठन्तु गण्डकीतटे। गच्छन्तु परमं स्थानं तद्विष्णोः परमं पदम् ॥४९॥
एतत् पवित्रमारोग्यं धन्यं दुःस्वप्ननाशनम्। गण्डकीभक्तिजननं विष्णुभक्तिविवर्धनम् ॥५०॥
शतजन्मार्जितैः पापैः सद्यः सर्वो विमुच्यते। सहस्रकुलसंयुक्तः प्रयाति परमं पदम् ॥५१॥
गण्डकीभक्तिमहिमानं शृणोति श्रावयेच्च यः। सर्वपापविनिर्मुक्तो विष्णुलोके महीयते ॥५२॥
ये पठन्ति नरा भक्त्या शृण्वन्ति च सदा द्विज। तेषां पापानि सर्वाणि क्षयं यान्ति न संशयः ॥५३॥
माहात्म्यं चक्रनद्या यः शृणोति पठतेऽपि वा। कपिलादानजनितं पुण्यं प्राप्नोति स ध्रुवम् ॥५४॥
षट्‌त्रिंशद्‌भूपते शाके आषाढे पञ्चमीतिथौ। अर्यम्णि सोमवारे च ग्रन्थोऽयं पूर्णतां गतः ॥५५॥

इति श्रीकश्यपकुलतिलककाश्यपचरणोपासककश्यपगोत्रीयश्रीकाशीरामविरचिते धरावराहसंवादे श्रीगण्डकीमाहात्म्ये एकादशोऽध्यायः ॥११॥
समाप्तोऽयं ग्रन्थः ॥ रामः ॥ रामः ॥

नवरसाष्टेन्दुशाके आषाढे नवमीतथौ। विशाखाभृगुवारे च ग्रन्थोऽयं पूर्णतां गतः ॥[२]

---

ती भगवत् शर्मा गण्डकीक्षेत्रमा बस्ने, सत्कर्ममा रुचि राख्ने, अर्काको धन, अन्न र पत्नीमा लोभ नगर्ने शुद्धात्मा र कुलदीपक मानिन्छन्। हरिभक्त भगवान् शर्मालें श्रद्धापूर्वक प्रश्न गरेपछि भगवान्‌को गौरवले गर्दा दृढभक्तिको महापीठमा रहेको सुनको कलश जस्तो ती भगवत्शर्माको प्रश्नमा गहिरिएर माहुरी जस्ता काशीरामले पृथिवीमा पर्न गएको वराहको मुखबाट निस्केका वचनरूपी अमृतका धाराको उद्धरण गरी सबैको कल्याण गरे ॥४५-४७॥

आफ्नै मुखद्वारा नाश नहुने र अन्त्य नभएको यो महानदी गण्डकीको पवित्र महिमा साधुहरूको प्रीतिका लागि धारण गरियो। सज्जनहरूले यस अमृतधारालाई सधैँ पिऊन्, गण्डकीको किनारमा बसून् र उत्तमस्थान विष्णुको परमपदमा जाऊन्। यो गण्डकीमाहात्म्य पवित्र, स्वास्थ्यलाभ गराउने, धन्य, खराब स्वप्न नाश गर्ने, गण्डकीमा भक्तिवृद्धि गराउने र विष्णुभक्ति पनि बढाउने स्वभावको छ। जुन मानिसले यो गण्डकी माहात्म्य सुन्छ र सुनाउँछ, त्यसले सय जन्म आर्जन गरेका पापहरूबाट पूर्ण रूपमा मुक्त हुन्छ, हजारौँ कुलसँगै परमात्मामा पुग्छ र सबै पापहरूबाट छुटेर विष्णुलोकमा सुहाउँछ। जुन मानिसले भक्तिका साथ गण्डकीमाहात्म्य पढ्छन् र सधैँ सुन्छन्, ती मानिसहरूका सबै पाप नष्ट हुन्छन्, यसमा शङ्का छैन। जुन मानिसे चक्रनदीको अर्थात् गण्डकीनदीको माहात्म्य सुन्छ वा पढ्छ, त्यसले निश्चय नै कैली गाई दान गरेको पुण्य पाउँछ ॥४८-५४॥

१६३६ शक संवत्सरमा असार महिनाको पञ्चमी तिथि, रेवतीनक्षत्र र सोमवारका दिन यो गण्डकीमाहात्म्य नामक ग्रन्थ पूर्ण भयो ॥५५॥

यसप्रकार कश्यपकुलका श्रेष्ठ काश्यपको चरणको उपासना गर्ने कश्यपगोत्रीय श्रीकाशीरामद्वारा रचना गरिएको पृथिवी र वराहको संवादमा आधारित श्रीगण्डकीमाहात्म्यमा एघारौँ अध्याय समाप्त भयो।

१८६९ शकसंवत्सरमा आषाढको नवमी तिथिमा, विशाखानक्षत्र र शुक्रवारका दिन यस ग्रन्थलाई सारेर पूर्णता प्रदान गरियो। श्रीनरहरिशर्मात्मजदयादासशर्मणा लिमिस्थाने ठानाविरौवारिजन्मभूमौ अस्मिन् काले अर्मादिग्रामे लिखितम्।
श्रीकृष्णागण्डकी सुप्रीता भवतु।
श्रीनरहरिशर्माका छोरा दयादास शर्माले लिमिस्थान विरौवारी ठाना, अर्मादिगाउँमा आफ्नै जन्मभूमिमा यो ग्रन्थ सारेको हो।

२. टिप्पणी यसै पृष्ठको बायाँतिर बक्समा छ मिलाएर राख्नुपर्ने

# २. श्रीपशुपतिपुराणम्[१]

प्रह्लादस्य तपःसिद्धिः (प्रह्लादको तपस्या सिद्धि)

प्रथमोऽध्यायः

यस्य वक्त्राद्विनिष्क्रान्ता वाग्वती लोकपावनी। नमामि शिरसा देवं शङ्करं भुवनेश्वरम् ॥१॥
येन धर्मार्थिना प्रोक्तं पुराणममृतोपमम्। नमामि शिरसा नाथं पुलस्त्यं मुनिसत्तमम् ॥२॥
यस्य काव्यं समालोक्य पुराणमिदमुद्धृतम्। नमोऽस्तु सततं तस्मै व्यासाय च महात्मने ॥३॥

सुत उवाच

आसुरी सुप्रभानाम नगरी लोकविश्रुता। यत्राऽन्धकोऽसुरश्रेष्ठस्तपस्तेपे सुदुष्करम् ॥४॥
महाश्मशकलैर्यत्र सर्वतः परिकीर्यति। पुरा यज्ञं समारेभे यत्र दक्षप्रजापतिः ॥५॥
तीर्थं कनखलं नाम त्रिषु लोकेषु विश्रुतम्। तैर्थिकैरसकृद्यत्र सेव्यते स्वर्गकाङ्क्षिभिः ॥६॥
तत्र भागीरथीतीरे भीष्मो धर्मविदांवरः। मुनिमाराधयामास पुलस्त्यं लोक पूजितम् ॥७॥
ततः कतिपयाहेन समक्षं मुनिपुङ्गवम्। ददर्श जाह्नवीसूनुर्वरदानार्थमागतम् ॥८॥
तत्क्षणादेव सम्प्राप्तं भगवन्तं महामुनिम्। प्रणम्य चरणौ मूर्ध्ना वाक्यमाह नृपात्मजः ॥९॥
राज्ञां चार्थवतां चैव गन्तुं मार्गः प्रवर्तते। निर्धनानां तु सत्त्वानां न पश्याम्यमरालयम् ॥१०॥
छेत्तारमिति विज्ञाय संशयानां महामुने। अनेनाराधितो भक्त्या त्वं मया शास्त्रकोविदः ॥११॥
अविज्ञानान्धकारञ्च मम चित्तनिरोधिनम्। छेत्तुमर्हसि देवर्षे निर्मलैर्वचनांशुभिः ॥१२॥
एवं पृष्टो महाप्राज्ञः पुलस्त्यो भगवान् मुनिः। व्याजहार शुभं वाक्यं धर्मनित्यं सुसंहितम् ॥१३॥

---

सारा लोकलाई पवित्र तुल्याउने वाग्वती नदी जसको मुखकमलबाट प्रकट हुनुभयो त्यस्ता कल्याणदायक भुवनेश्वर शिवजीलाई म शिर झुकाएर नमस्कार गर्दछु। जुन धर्मात्माले यो अमृतसमान पशुपतिपुराणको कथा सुनाउनुभयो, त्यस्ता मुनिश्रेष्ठ पुलस्त्यलाई शिरले नमस्कार गर्दछु। जसको काव्यको गम्भीर अध्ययन गरी यस पशुपतिपुराणको उद्धार गरिएको छ त्यस्ता महात्मा व्यासलाई पनि म नित्य नमस्कार गर्दछु ॥१-३॥

सुतजी भन्नु हुन्छ - दैत्यहरूको राजधानी "सुप्रभा" लोकमा प्रसिद्ध छ जहाँ अन्धक नामक दैत्यराजले अति कठोर तपस्या गरेका थिए। ठूला ठूला ढुङ्गाहरू सबैतिर खचिखचाउ भएको पर्वतमा पहिले दक्ष प्रजापतिले यज्ञानुष्ठान गरेका थिए। त्यस पर्वतमा रहेको कनखल नामको तीर्थ तीनै लोकमा प्रसिद्ध छ। स्वर्गफल चाहने तीर्थालुहरू त्यहाँ सधैँ जान्छन्। त्यहीँ भागीरथीको किनारमा धर्मधुरन्धर श्री भीष्मपितामहले लोकपूज्यमुनि श्री पुलस्त्यको आराधना गरेका थिए ॥४-७॥

तपस्याको धेरै समयपछि वरदान दिन आफ्ना सामु आउनुभएका मुनिश्रेष्ठ पुलस्त्यलाई गङ्गापुत्र भीष्मले देख्नुभयो। त्यस बेला महामुनिका चरणमा दण्डवत् प्रणाम गरी गङ्गापुत्र भीष्मले भन्न लाग्नुभयो ॥८-९॥

भीष्मले भन्नुभयो - राजाहरू र धनीहरूका लागि त स्वर्ग जाने मार्ग छ परन्तु निर्धन प्राणीहरूका लागि त्यो मार्ग म देख्दिनँ। हे महामुनि ! हजुरलाई सम्पूर्ण शङ्काहरूको समाधान गर्न समर्थ ठूला विद्वान् जानेर शास्त्रज्ञ हजुरको आराधना गरेको हुँ। मेरो चित्तलाई चञ्चल हुन नदिई एकाग्र तुल्याउनुहुने र अज्ञानको अन्धकारलाई हटाइदिने वचनरूपी किरणद्वारा शङ्का समाधान गर्न हजुर नै योग्य हुनुहुन्छ। यसरी भक्त भीष्मले प्रश्न गरेपछि महाप्राज्ञ ऋषिश्रेष्ठ पुलस्त्यले धर्मसम्मत पुण्यवचन उच्चारण गर्नुभयो ॥१०-१३॥

[१] योगी नरहरिनाथ्युद्वारा हिमवत्खण्डको प्रथम संस्करणको परिशिष्टमा खण्डित रूपमा प्रस्तुत पशुपतिपुराणलाई प्रज्ञाप्रतिष्ठानबाट प्रकाशित संस्करणको सहयोगमा पूरा गरेर अविकल तुल्याई नेपाली अनुवादसहित यहाँ प्रस्तुत गरिएको छ। (ग्रन्थसम्पादक)

पुलस्त्य उवाच

अस्ति पुत्र महाप्राज्ञ ब्रह्मणा किल भाषितम्। सर्वपापहरं पुण्यं तीर्थं स्वर्गफलप्रदम् ॥१४॥
नैव दानेन तु स्वर्गो वक्ष्यते तत्त्वदर्शिभिः। विद्यते स्वर्गगमनं तीर्थस्नानफलेन च ॥१५॥
पर्वतस्य च माहात्म्यं तीर्थस्य च विशेषतः। श्रूयतां श्रुतिशास्त्राणां पुराणं पुण्यविस्तरम् ॥१६॥
ब्रह्मणो वरदानेन सदारो देवपूजितः। अपत्यानां शतं लेभे हिमवानचलाधिपः ॥१७॥
उशीरबीजः प्रथमस्तीर्थनामकरो गिरिः। उच्छत्रकोऽथ कासुन्द उज्जयन्तस्तथैव च ॥१८॥
चित्रह्रदः सुह्रदश्च केतुमान् मणिमान् तथा। काभीरश्च सुनाभश्च चक्रनाभस्तथैव च ॥१९॥
गोमांश्च धेनुमांश्चैव व्याघ्रवान् पुष्पकस्तथा। गिरिर्वैतरणश्चैव श्यामको वृषभस्तथा ॥२०॥
चक्रनेमिः सुनेमिश्च चक्रपर्वत एव च। चन्द्रो द्रोणश्च काकन्दः ककन्दः स्कन्द एव च ॥२१॥
कुञ्जश्चैव निकुञ्जश्च मुकुन्दः खण्डकस्तथा। शिवकूटः सुवेलश्च पारियात्रस्तथैव च ॥२२॥
मृगेन्द्रशिखरश्चैव चन्दनागिरिरेव च। पर्वतो मणिधातुश्च यस्मान् मणिमती नदी ॥२३॥
एतत्प्रभृति शैलानां शतं सिद्धाश्रमं शुभम्। मृगेन्द्रशिखरं तावत्कीर्तयिष्यामि सुव्रत ॥२४॥
हिरण्यकशिपुं हत्वा लीलया कामरूपधृक्। नृसिंहो शिखरो भूत्वा तस्मिन्नद्रौ चचार ह ॥२५॥
मृगमध्ये प्रधानत्वान्मृगेन्द्र इति कीर्त्यते। मृगेन्द्रशिखरो नाम तेनैव विश्रुतो गिरिः ॥२६॥
तस्य मूर्ध्नि मृगोऽद्यापि दृश्यतेऽस्मिञ्छिलातनुः। शृङ्गाधिरोहणात्तस्य तुष्यते पुरुषोत्तमः ॥२७॥
तस्य प्रस्थं समाश्रित्य सूर्यकेतुर्नराधिपः। समानुषेण देहेन सूर्यलोकमवाप्तवान् ॥२८॥

भीष्म उवाच

कस्मिन्द्वीपेऽभवच्छ्रीमान् सूर्यकेतुर्नराधिपः। कस्योपदेशाच्छैलेन्द्रं हिमवन्तं समाश्रितः ॥२९॥

पुलस्त्य उवाच

कृत्वा निःक्षत्रियां पृथ्वीं भार्गवोऽमितविक्रमः। जम्बूद्वीपे ददौ राज्यं स्वादरात्सूर्यकेतवे ॥३०॥
भुजवीर्येण रामस्य पुत्रवत्परिरक्षितः। ररक्ष राज्यं धर्मज्ञो निश्शेषहतकण्टकम् ॥३१॥
एतस्मिन्नन्तरे काले नारदो भगवान् मुनिः। जगाम गेहं रत्नाढ्यं सूर्यकेतोर्महीपतेः ॥३२॥

---

श्री पुलस्त्य भन्नुहुन्छ – हे पुत्र ! अर्थात् हे शिष्य ! अत्यन्त बुद्धिमान् भीष्म ! स्वयं ब्रह्माजीबाट आज्ञा भएको सम्पूर्ण पापनाशक, पुण्यप्रद र स्वर्गफलदायक अनेकौं तीर्थहरूको महिमा म बताउनेछु। मानिस दानले मात्र स्वर्गमा जान्छ भन्ने कुरा तत्त्वदर्शीहरूले कहीं बताएको पाईदैन, स्वर्गमा जानका लागि त एक मात्र तीर्थस्नानको फल हेतु बनेर रहेको छ। पुण्यपर्वतहरूको महिमाले भरिएको, श्रुति र स्मृतिद्वारा वर्णित पुण्यहरूको गर्ने पुराण सुन्नुहोस् ॥१४–१६॥

ब्रह्माजीको वरदानबाट देवताहरूद्वारा पनि पूजनीय आफ्नी गृहिणीसहित पृथ्वीका सम्पूर्ण पर्वतहरूका राजा हिमालयले सय छोरा पाए। तीमध्ये जेठो उशीरबीज, अनि क्रमशः तीर्थनाम, उच्छत्रक, कासुन्द, उज्जयन्त, चित्रह्रद, सुह्रद, केतुमान्, मणिमान्, काभीर, सुनाभ, चक्रनाभ, गोमान्, धेनुमान्, व्याघ्रवान्, पुष्पक, वैतरण, पर्वत, श्यामक, वृषभ, चक्रनेमि, सुनेमि, चक्रपर्वत, चन्द्र, द्रोण, काकन्द, स्कन्द, कुञ्ज, निकुञ्ज, मुकुन्द, खण्डक, शिवकूट, सुवेल, पारियात्र, मृगेन्द्र शिखर, चन्दनागिरि र मणिधातु पर्वत हुन्। मणिधातु पर्वतबाट नै मणिमती नदीको प्रादुर्भाव भयो। हे सुव्रत ! सयौं पर्वतहरूमा अनगिन्ती सिद्धका आश्रमहरू रहेका छन्। हिमालयले पुत्ररूपमा पैदा गरेका तीनै पर्वतशिखरमध्ये मृगेन्द्रशिखरको महिमा पहिले बताउँछु ॥१७–२४॥

हरण्यकशिपुको वध गरिसकेपछि स्वेच्छया नरसिंहको रूप धारण गर्ने भगवान् विष्णु त्यस पर्वतमा घुम्नुभएको थियो। मृगमा प्रधान हुनाले मृगेन्द्र भनिन्छ। यसैबाट नै पर्वतको नाम मृगेन्द्रशिखर प्रसिद्ध भयो। त्यस मृगेन्द्रशिखरपर्वतमा अहिले पनि शिलामय मृग देखिन्छ। त्यस पर्वतको शिखरमा जाँदा भगवान् नृसिंह सन्तुष्ट हुनुहुन्छ। त्यसै पर्वतको शिखरमा रही त्यसैको आश्रय लिएर राजा सूर्यकेतु मनुष्यशरीरले नै सूर्यलोकमा जान समर्थ भए ॥२५–२८॥

भीष्मले प्रश्न गरे – हे ज्ञानवान् गुरु ! हे पुलस्त्य महाराज ! सूर्यकेतु कुन द्वीपका राजा थिए र कसको आज्ञा पाएर गिरिराज हिमालयको आश्रयमा आए ? ॥२९॥

पुलस्त्य आज्ञा गर्दछन् – अत्यन्त शूर वीर पराक्रमी पशुरामले पृथ्वीलाई क्षत्रियरहित तुल्याई अत्यन्त आदर सम्मानका साथ जम्बूद्वीपको राज्य सूर्यकेतु राजालाई दिएका थिए ॥३०॥ श्री परशुरामको बाहुबलले पुत्रजस्तै सुरक्षित रहेर धर्मज्ञराजा सूर्यकेतुले सम्पूर्णराज्यका कण्टकहरूलाई राष्ट्रबाटै बहिष्कृत गराई राज्यको रक्षा गरे ॥३१॥ त्यस अवसरमा अग्नितुल्य तेजस्वी नारदमुनि पनि रत्नै रत्नले खचिखचाउ भएको राजा सूर्यकेतुको दरबारमा पुगे ॥३०–३२॥

राजालयं समासाद्य महर्षिः पावकोपमः। सम्पूजितो नरेन्द्रेण निषसाद वरासने ॥३३॥
पृछ्यमानो नरेन्द्रेण महर्षिर्धर्मकोविदः। कृत्स्नं संश्रावयामास नित्यानित्यविवक्षया ॥३४॥
वचनान्ते ततस्तस्य महर्षेरमितौजसः। विष्णुलोकरतो धीमान् भीतः संसारपञ्जरात् ॥३५॥
राज्यधर्मं परित्यज्य भार्गवेऽमितविक्रमे। कृतप्रदानः सहसा यथाशक्ति समादरात् ॥३६॥
भार्यया सहितो राजा मुनिनादिष्टसत्पथः। चित्तं निधाय तपसि हिमवन्तं विवेश ह ॥३७॥
ततः सम्प्राप्तमात्रेण हिमवन्तं नगोत्तमम्। अब्रवीदीदृशं वाक्यं नारदो धर्मसंहितम् ॥३८॥
वाग्वतीप्रभवाभ्यासे बहुपुष्पफलाकुले। विष्णोर्विहारशैलेन्द्रे कुरु तत्राश्रमं नृप ॥३९॥
कृत्वा तु वसतिं राजन् वाग्वतीप्रभवे गिरौ। कालान्तरेण नियतं विष्णुलोकमवाप्स्यसि ॥४०॥
वयश्चाप्यचलं भूयो राजँस्तव ममाज्ञया। इत्युक्त्वा नारदो धीमाँस्तत्रैवाऽन्तरधीयत ॥४१॥
ततस्तस्य वचः श्रुत्वा महर्षेरमितौजसः। गिरेर्मनोरमे प्रस्थे वाग्वतीजलशोभिते ॥४२॥
मन्दमारुतविक्षेपनिपतत्कुसुमाकुले। नानाविहगसङ्घुष्टे विलसन्मृगसेविते ॥४३॥
तपोजाप्यपरो भूत्वा नारायणपरायणः। चकार वसतिं तत्र सूर्यकेतुर्नराधिपः ॥४४॥

भीष्म उवाच

समानुषेण देहेन विष्णुलोकमवाप्तवान् ॥४५॥
वाग्वती नाम विख्याता सरित्तस्मिन् समुद्भवा। कस्मिन्नवसरे जाता तच्च श्रावय तां मुने ॥४६॥

पुलस्त्य उवाच

सहस्रमेकं वर्षाणां प्रह्लादो दैत्य सत्तमः। रुद्रमाराधयामास पुरा तस्मिञ्छिलोच्चये ॥४७॥
तपः प्रभावान्महतः सन्तुष्टो दितिनन्दनात्। दृष्टमात्रेऽतिहर्षेण मुमोच हसनं हरः ॥४८॥
हासांशुनिकराद्रम्याद्देवदेवस्य धीमतः। उत्पपात गिरेर्मूर्ध्नि नदी पुण्यजलाशया ॥४९॥

---

राजाको दरबारमा पुगेर अग्नितुल्य प्रकाशमान देवर्षि नारद राजाद्वारा सम्मानित भै उत्तम आसनमा विराजमान भए। राजाबाट विनम्रभावले सोधिएपछि धर्मज्ञ विद्वान् नारद मुनिले नित्य र अनित्य वस्तुको विस्तृत विवेचना गर्दै सम्पूर्ण ज्ञान सुनाएका थिए। अत्यन्त तेजस्वी महर्षि नारदको वचन सुनी संसाररूपी पिँजरामा थुनिइरहनु पर्ने डरले विष्णुलोक प्राप्तिमा अत्यन्त उत्सुक बुद्धिमान् राजा सूर्यकेतुले अपरिमित पराक्रमी परशुरामजीमा नै राज्यभार सुम्पेर आफ्नो शक्ति अनुसारआदर पूर्वक अरू सम्पत्ति पनि दान दिई महर्षि नारदजीको आज्ञा अनुसार आफ्नी सहधर्मचारिणी रानीका साथ तपस्यामा चित्त लगाई शैलाधिराज हिमालयमा प्रवेश गरेका थिए ॥३३-३७॥

ईश्वरका विभूति शैलाधिराज हिमालयको शरणमा आउनेबित्तिकै नारदमुनिले धर्मसम्मत वचन यसप्रकार आज्ञा गरे। हे राजा ! भगवान् विष्णुको विहारभूमि मृगेन्द्रपर्वतमा अनेक फूल तथा फलले भरिपूर्ण भएको वाग्वतीको मुहानको नजिकमा आश्रम बनाउनोस्। हे महाराज ! वाग्वतीको उद्भव हुने पर्वतमा बसी कालान्तरमा अवश्य विष्णुलोक प्राप्त गर्न सफल हुनुहुनेछ। हे महाराज ! मेरो आज्ञाले गर्दा तपाईंको आयुष्य पनि स्थिर हुनेछ भन्ने कुरा सूर्यकेतुलाई आज्ञागरी नारदजी त्यहीं नै अन्तर्धान हुनुभयो ॥३८-४१॥

त्यसपछि अत्यन्त तेजस्वी महर्षि नारदजीको त्यो वचन सुनेर पर्वतको सुन्दर चुचुरामा पवित्र वाग्वतीको जलद्वारा अत्यन्त शोभित मन्द मन्द वायुका कम्पनबाट खसिरहेका फूलहरूद्वारा व्याप्त भएको रङ्गीबिरङ्गी चराहरूका अनेक ध्वनिले गुञ्जायमान भएको, भय र शङ्कारहित भई आनन्दसँग घुम्ने सुन्दर सुन्दर मृगहरूले सेवा गरिएको यस्तो त्यस तपोभूमिमा जप-तपमा तत्पर भै नारायणपरायण नरपति श्रीसूर्यकेतु विराजमान भए। मनुष्यदेह सहित भएर नै उनले विष्णुलोक प्राप्त गरे ॥४२-४५॥

भीष्मपितामह प्रश्न गर्नुहुन्छ - हे पूज्य गुरुदेव पुलस्त्यजी ! वाग्वती नामकी नदी त्यस मृगेन्द्रशिखरमा प्रकट भइन्। त्यो कुन बेलाको कुरा हो ? सम्पूर्ण कथा सुनाउनुहोस् ॥४६॥

पुलस्त्य मुनि आज्ञा गर्दछन् - परापूर्वकालमा त्यस मृगेन्द्रशिखर पर्वतमा दैत्यश्रेष्ठ प्रह्लादले एक हजार वर्षसम्म रुद्रको आराधना गरेका थिए। दितिवंशज प्रह्लादको महान् तपस्याको प्रभावले सन्तुष्ट हुनुभएका भगवान् शिव प्रकट हुनु भयो र अट्टहास गर्नुभयो। बुद्धिका स्वामी देवाधिदेव श्रीमहादेवको रमणीय हास्यकिरणहरूका समूहबाट पर्वतको टाकुरामा पुण्यमय जलाशय भएकी वाग्वती नदी प्रकट भइन् ॥४७-४९॥

हरहासांशुसम्भूता फेनप्रस्यन्दवाहिनी। वचनात्सम्भवो यस्माद् वाग्वतीत्यभिधीयते ॥५०॥
श्रुत्वा तस्याः पवित्राङ्ग्याः समुत्पत्तिं निजालयात्। सम्प्राप्ता मुनयश्चैव देवाश्च सुमनोजवाः ॥५१॥
गन्धर्वयक्षरक्षांसि नागराजाश्च तत्क्षणात्। दैत्याश्च दानवाश्चैव कृतपुष्पोपहारकाः ॥५२॥
सिद्धाश्चाप्सरसश्चैव चित्रालङ्कारभूषणाः। भूतकिन्नरयुग्मानि पिशाचा ये च खेचराः ॥५३॥
ततो देवो महादेवः सर्वभूतपतिः शिवः। दृष्टिं निधाय दैत्येन्द्रे जगाद वचनं शुभम् ॥५४॥
प्रह्लाद त्वयि धर्मज्ञे सुप्रीताः पश्य देवताः। दैत्यानामीदृशं पुण्यमन्येषान्तु न विद्यते ॥५५॥
मम वक्त्रात्समुद्भूता वाग्वती वचनात्क्षितिम्। अप्रवेश्याऽसुरैर्भूयात्तपसा तव सुव्रत ॥५६॥
सैव तीर्थवती श्रेष्ठा लोककामफलप्रदा। सेव्या भवतु सर्वेषां मम लोकाभिलाषिणाम् ॥५७॥
योगीश्वरश्च धर्मज्ञ मत्प्रसादाद् भविष्यसि। इत्युक्त्वा देवदेवेशस्तत्रैवान्तर्दधे स्वयम् ॥५८॥
देवदैत्यादयोऽन्येऽपि दुद्रुवुर्भवनं स्वकम्। प्रह्लादोऽपि महाबाहुरभिप्रेतालयं ययौ ॥५९॥
ततो विभात्युज्ज्वलहेममालिनी मृगेन्द्रशैलोपरि नित्यवर्तिनी।
समुद्रगा तीरजवृक्षपल्लवैर्विमुक्तपुष्पाकुलवीचिवाहिनी ॥६०॥

इति वाग्वतीप्रशंसायां तीर्थवर्णने प्रह्लादतपः सिद्धिर्नाम प्रथमोऽध्यायः ॥

---

शिवजीको हास्यकिरणबाट उत्पन्न भई फेनप्रवाह बहाउने वाग्वती नदी शिववाक्यबाट प्रकट भइन्। यसकारण उनी लोकमा वाग्वती नामले प्रख्यात छन्। पवित्र अङ्ग भएकी वाग्वतीको उत्पत्तिरहस्य सुनेर आ–आफ्ना आश्रमहरूबाट सिद्धगण ऋषिवृन्द र देवताहरू वायुवेगले त्यहाँ आए। त्यसबेला गन्धर्व, यक्ष, राक्षस, नागराज, दैत्य र दानवहरूसमेत एकत्रित भै पुष्पपत्र आदिको उपहार लिएर त्यहीँ उपस्थित भए। सिद्धगण तथा विचित्र अलङ्कारहरूले सिंगारिएका अप्सराहरू, भूतगण, किन्नरगणका दम्पती, पिशाच र आकाशमा घुम्ने सबै आइपुगे। त्यसपछि सम्पूर्ण प्राणीहरूका पति कल्याणस्वरूप भगवान् पशुपतिले प्रह्लादलाई अत्यन्त कृपादृष्टिले नजर गरी अमृतमय शुभ वचन व्यक्त गर्नुभयो। धर्मको यथार्थ मर्मज्ञ, हे बाबु प्रह्लाद ! हेर तिमीमाथि सम्पूर्ण देवता प्रसन्न छन्। दैत्यहरूमा यस्तो पुण्य त अरू कसैको पनि देखिँदैन ॥५०–५५॥

हे सुव्रत प्रह्लाद ! मेरो मुखबाट उत्पन्न भएकी वाग्वती नदी तिम्रो तपोबलले गर्दा पृथ्वीमा विलीन नभई सधैँ यहाँ बगिरहून् सर्वतीर्थवती श्रेष्ठ नदी वाग्वती नदी सम्पूर्ण धर्मप्राण समाजको मनोरथ पूरा गराउने भएकीले शिवलोकको इच्छा गर्ने सम्पूर्णका निमित्त सेवनीय छन्। हे धर्मज्ञ प्रह्लाद ! मेरो अनुग्रहद्वारा तिमी योगीश्वर हुनेछौ। यसरी प्रह्लादजीलाई आज्ञा गरी देवाधिदेव भगवान् शिव त्यहीँ नै अन्तर्ध्यान हुनुभयो ॥५६–५८॥

त्यहाँ जम्मा भएका देवताहरू, दैत्यगण, यक्षसमूह र किन्नरगण आदिसमेत अरू सबै आ–आफ्ना लोकमा गए। महापराक्रमी भक्तशिरोमणि प्रह्लाद आफ्नो दरबारतिर गए। त्यसै बेलादेखि नै मृगेन्द्र शिखर पर्वतमाथि नित्यनिरन्तर मूल रूपले रहेकी एवं चहकदार उज्ज्वल सुनको जस्तो प्रवाहयुक्त तीरमा उत्पन्न भएका वृक्ष तथा लता, गुल्म र पालुवाको अञ्जलिपूर्ण र अनेकौँ तरङ्गले परिपूर्ण वाग्वती नदी यस धराधाममा सुशोभित भएकी छिन् ॥५९–६०॥

यसरी प्रह्लादको तपःसिद्धिनामक पहिलो अध्याय पूर्ण भयो ॥

# अथ द्वितीयोऽध्यायः

नेपालस्थतीर्थमाहात्म्यवर्णनं विभीषणस्य तपःसिद्धिश्च

(नेपालका तीर्थहरूको महिमा र विभीषणको तपस्यासिद्धि)

भीष्म उवाच

श्रुतास्मिन् पुण्यवाग्वत्याः समुत्पत्तिर्महामुने। अनल्पफलदा श्रेष्ठा सर्वपापप्रणाशिनी ॥१॥

केषु केषु प्रदेशेषु तीर्थं तस्याः प्रचक्षते। तीर्थस्य च फलं कृत्स्नं श्रोतुमिच्छाम्यहं मुने ॥२॥

पुलस्त्य उवाच

अथातः सम्प्रवक्ष्यामि मूर्ध्नि तस्यैव भूभृतः। महाश्मशकलाकीर्णे नानाविहगसेविते ॥३॥

नानाकुसुमसङ्कीर्णे नानावृक्षोपशोभिते। नदीसलिलभङ्कारशब्दसङ्घातपूरिते ॥४॥

महाश्मनः प्रपतितं यत्र तीर्थोदकं शुभम्। तीर्थे विष्णुपदे रम्ये विष्णुलोकफलप्रदे ॥५॥

चतुर्विंशद्द्वादशीषु स्नाति यो नियमैर्नरः। मानुषं विभवं भुक्त्वा विष्णुलोकं स गच्छति ॥६॥

दूरादपि विनिर्दिष्टा फेनप्रस्यन्दवाहिनी। विष्णोः पदात्स्रवन्तीति तस्माद्विष्णुपदी स्मृता ॥७॥

वाग्वत्याः विष्णुपद्याश्च सम्भेदे सत्त्वसेविते। स्नायते विधिना यस्तु सौभाग्यं लभते नरः ॥८॥

गङ्गा च यमुना चैवा तथा देवी सरस्वती। तत्र गच्छन्ति पञ्चम्यां तस्मात् पञ्चनदी स्मृता ॥९॥

अथातः सम्प्रवक्ष्यामि दर्यां तस्यैव भूभृतः। इन्द्रमार्गमिति ख्यातं तीर्थमिन्द्रेण कल्पितम् ॥१०॥

अस्मिंस्तीर्थ वरे पुण्ये विधिना स्नाति यो जनः। मोदते चाप्सरोभिश्च परत्र स्वस्तिकामुकः ॥११॥

दिव्याप्सरोभिः संसेव्या फेनालिनिकरोज्ज्वला। इन्द्र मार्गात्स्रवन्तीति चेन्द्रमार्गेति विश्रुता ॥१२॥

---

भीष्म पितामहले सोध्नुभयो – हे महामुनि पुलस्त्यजी ! यस मृगेन्द्रशिखर पर्वतमा पुण्यमयी वाग्वतीको उत्पत्तिको वर्णन सुनियो। सम्पूर्ण पापलाई नष्ट गरिदिने, अनन्त पुण्यफल प्रदान गर्ने यी अत्यन्त पवित्र, वाग्वतीको कुन कुन प्रदेशहरूमा विशेष तीर्थ रहेका छन्, बताउनुहोस्। ती पुण्यप्रद तीर्थहरूको सम्पूर्णफल पनि म सुन्न चाहन्छु, तपाईंले सुनाउनुहोस् ॥१-२॥

पुलस्त्य भन्दछन् – अब यस पछि ठूला ठूला चट्टानहरूले भरिएको अनेकौं वृक्षहरूले गर्दा अत्यन्त रमणीय देखिने, जातजातका फूलहरूले ढकमक्क भएको, अनेकौं रङ्ग विरङ्गका चराहरूले सेवा गरिएको, वाग्वतीको जलको भङ् भङ् शब्द संघातले परिपूर्ण भएको, मृगेन्द्रशिखर पर्वतको शिखरमा जहाँकि ठूला ठूला चट्टानहरूबाट पवित्र तीर्थजल निरन्तर भरिरहन्छन्। अहिले म तिनै तीर्थहरूको माहात्म्य बताउनेछु ॥३-४॥

जहाँ ठूलो चट्टानबाट भरेको पुण्यप्रद तीर्थजल छ, जसले साधकलाई विष्णुलोकप्राप्तिरूपी फल प्रदान गर्दछ। १२ महिनासम्म २४ द्वादशीहरूमा जुन मनुष्यले निमयपूर्वक स्नान गर्दछ त्यो मनुष्यलोकको वैभव भोग समाप्त गरी विष्णुलोकमा प्राप्त हुन्छ ॥६॥ यहाँबाट स्पष्ट देखिने, फिँज प्रवाह बहाउने उनै पवित्र नदी भगवान् विष्णुको पाउबाट निस्कने हुँदा विष्णुपदी नामले लोकमा प्रख्यात भएकी छन् ॥७॥ सत्त्वगुणी सज्जनद्वारा सेवा गरिएकी वाग्वती र विष्णुमतीका सङ्गममा जुन मनुष्यले विधिपूर्वक स्नान गर्दछ त्यसले ठूलो पुण्य एवं परम सौभाग्य प्राप्त गर्दछ ॥५-८॥

गङ्गा, यमुना र देवी सरस्वती यी तीनै पुण्यदायिनी नदीहरू पञ्चमीतिथिमा त्यस पवित्र सङ्गममा जाने हुँदाउनको नाम पञ्चनदी भनी प्रसिद्ध भएको छ। त्यही मृगेन्द्रशिखरको गुफामा इन्द्रले बनाएको इन्द्रमार्ग नामबाट प्रख्यात तीर्थको वर्णन गर्नेछु। यो श्रेष्ठतम तथा अत्यन्त पुण्यप्रद तीर्थमा आफ्नो कल्याण चाहने जुन मनुष्यले विधिपूर्वक स्नान गर्नेछ, त्यो पुण्यात्मा परलोकमा अप्सराहरूका साथ आनन्दपूर्वक रमाएर बस्न पाउनेछ। दिव्य अप्सराहरूद्वारा सेवनीय, सुन्दर फेनपंक्तिका समूहले उज्ज्वल र इन्द्रमार्गबाट बग्ने हुँदा ती नदी इन्द्रमार्गा नामले प्रसिद्ध छन् ॥९-१२॥

वाग्वत्या इन्द्रमार्गायाः सम्भेदे सत्त्वसेविते। मज्जति विधिना योऽयमिन्द्रलोकं स गच्छति ॥१३॥
ततो मणिमती नाम सरिदद्रिशिरोभवा। तस्याश्च प्रभवं तीर्थं प्रवक्ष्यामि प्रकामदम् ॥१४॥
मणिधातुनगोत्सङ्गे तीर्थे मणिशिलान्तरे। संस्नाति विधिना यस्तु कामसिद्धिमवाप्नुयात् ॥१५॥
मणिना कल्पितं लिङ्गं मणिलिङ्गमिति स्मृतम्। चूडामणेः स्रवन्तीति तस्मान्मणिमती स्मृता ॥१६॥
वाग्वत्या मणिमत्याश्च सङ्गमे सत्त्वसेविते। संस्नाति विधिना यस्तु सर्वकाममवाप्नुयात् ॥१७॥
सम्भेदेऽस्यास्तदभ्याशे स्रोतस्यूर्ध्वं विनिस्सृते। रुद्रधाराजलं नाम तीर्थमस्ति प्रकामदम् ॥१८॥
स्फटिकाक्षावलीतुल्यजलबुद्बुदमालिनम्। रुद्रधारोदयं दृष्ट्वा सर्वपापैर्विमुच्यते ॥१९॥
अस्मिंस्तीर्थवरे पुण्ये विधिना स्नाति यो जनः। विमानेनार्कवर्णेन रुद्रलोकं स गच्छति ॥२०॥
कृष्णाष्टम्यां चतुर्दश्यां पञ्चदश्यां विशेषतः। स्नातव्यं विधिना नित्यं रुद्रलोकफलार्थिभिः ॥२१॥
सुतो विश्रवसः श्रीमान् राक्षसोऽथ विभीषणः। स्वपितुः शासनात्तत्र तप उग्रं चकार ह ॥२२॥

भीष्म उवाच

धर्मशीलेन धीरेण पितुः शासनवर्त्तिना। कस्योपदेशाद्देवर्षे तपस्तस्मिन्ननुष्ठितम् ॥२३॥

पुलस्त्य उवाच

पुरा लङ्कापुरीं त्यक्त्वा धर्मशीलो विभीषणः। गोकर्णारण्यकं रम्यं प्राप्तवान् पितुरालयम् ॥२४॥
प्राप्तमात्रस्तु धर्मज्ञो ज्वलन्तं तपसः श्रिया। प्रणम्य पितरं मूर्ध्ना निषसाद कुशासने ॥२५॥
ततश्चित्तगतं ज्ञात्वा पुत्रस्याक्लिष्टकर्मणः। व्याजहार शुभं वाक्यं विश्रवा मुनिपुङ्गवः ॥२६॥

---

धेरै प्राणीहरूले सेवा गरिएको वाग्वती र इन्द्रमार्गाको सङ्गममा जुन व्यक्तिले विधिपूर्वक स्नान गर्दछ, त्यो पुण्यात्मा इन्द्रलोकमा सहजैप्राप्त हुन्छ। यसपछि रुद्रको शिरबाट उत्पन्न भएकी मणिमती नामकी नदीमा प्रकट भएका तीर्थको वर्णन गर्नेछु। मणिधातु नामक पर्वतको काखमा सुशोभित मणिशिला नामक तीर्थमा जसले स्नान गर्दछ, त्यस साधकको सम्पूर्ण मनोरथ सिद्ध हुन्छ ॥१३-१५॥

मणिले बनाएको लिङ्गलाई मणिलिङ्ग भनिन्छ। त्यसैको चूडामणिबाट बग्ने पुण्यप्रद नदीलाई मणिमती भनिन्छ। सात्त्विक धर्मात्माहरूद्वारा सेवित वाग्वती र मणिमतीको सङ्गममा जुन पुण्यात्मा साधकले विधिपूर्वक स्नान गर्दछ, त्यस साधक पुरुषका सम्पूर्णकामना साकार हुन्छन्। वाग्वती र मणिमतीको मुहानका रूपमा रुद्रधाराजल नामक ज्यादै पवित्र र साधकका धर्म-अर्थ र कामसम्बन्धी सम्पूर्ण इच्छा पूर्ण गराउने तीर्थ रहेको छ ॥१६-१८॥

स्फिटिकका मालासमान जलबुद्बुदको माला भएको रुद्रधारोदय तीर्थको दर्शन गरेपछि मनुष्य सम्पूर्ण पापबाट मुक्त हुन्छ। त्यस उत्तम पुण्यतीर्थमा जसले विधिपूर्वक स्नान गर्दछ, त्यो पुण्यात्मा व्यक्ति सूर्यतुल्य चहकिलो विमानमा बसी रुद्रलोकमा प्राप्त हुन्छ। रुद्रलोकको कामना लिने साधक पुण्यात्माले खास गरेर हरेक कृष्णपक्षको अष्टमी, चतुर्दशी, औंसी र शुक्लपक्षको पूर्णिमाका दिन विधिपूर्वक यस पुण्यतीर्थमा स्नान गर्नु पर्दछ। विश्रवाका छोरा पुण्यात्मा राक्षसविभीषणले पनि आफ्ना पिताको आज्ञा अनुसार यही तीर्थमा नै उग्र तपस्या गरेका थिए ॥१९-२२॥

भीष्मपितामहले सोध्नुभयो – हे परमर्षि ऋषिश्रेष्ठ पुलस्त्यजी! पितृआज्ञापरायण धर्मात्मा र वीर पुरुष विभीषणले कसको उपदेशबाट त्यस पुण्य तीर्थमा तपस्याको अनुष्ठान गरे ? ॥२३॥

ऋषि पुलस्त्यजी भन्दछन् – परापूर्वकालमा धर्मात्मा विभीषण लङ्कापुरी छोडी अत्यन्त रमणीय गोकर्णको उपवनमा रहेको आफ्ना पिता विश्रवाको आश्रममा आएका थिए। त्यहाँ आइपुग्नेबित्तिकै धर्मात्मा विभीषण तपस्याको शोभाले जल्दाबल्दा आफ्ना पितालाई शिरले प्रणाम गरी कुशासनमा बसे। त्यसपछि कल्याणकार्यमा संलग्न आफ्ना छोराको भित्री भाव बुझी मुनिश्रेष्ठ विश्रवा वात्सल्यपूर्ण भावले भन्न लागे ॥२४-२६॥

विश्रवा उवाच

ज्ञातं वै तव धर्मज्ञ यतः कार्यादिहागतः। विना न तपसा पुत्र सिध्यन्ते कार्य सम्पदः ॥२७॥
रम्ये हिमवतः कुक्षौ सुरसिद्धनिषेविते। महादेवमुखोद्भूता वाग्वती सरिदुत्तमा ॥२८॥
रम्या मणिमती चैव चूडामणिसमुद्भवा। तयोस्तुसङ्गमाभ्याशे स्रोतस्यूर्ध्वं विनिस्सृतम् ॥२९॥
रुद्रधाराजलं पुण्यं तीर्थमस्ति प्रकामदम्। जलं पातालगङ्गाया रुद्रपादार्घनिस्सृतम् ॥३०॥
पवित्रं परमं तीर्थं सर्वकामफलप्रदम्। उग्रं तपस्तत्र गत्वा क्रियतां नियमेन वै ॥३१॥
विनिगृह्येन्द्रियग्रामं मन्त्रजापपरो भव। ततस्तस्य वचः श्रुत्वा पितुर्धर्मभृतां वरः ॥३२॥
प्रययौ जवमास्थाय हिमवन्तं विभीषणः। प्राप्तमात्रेण धर्मज्ञो रुद्रधारोदयं शुभम् ॥३३॥
निमज्य वाग्वतीतोये चकारोग्रतरं तपः। दिनान्तरेण केनापि कीर्तिमान् पुण्यवत्सलः ॥३४॥
आगत्य विश्रवास्तत्र प्रावदत्साधु साध्विति। पुत्रं जले स्थितं दृष्ट्वा वेपमानं मुहुर्मुहुः ॥३५॥

विश्रवा उवाच

व्याजहार शुभं वाक्यं विश्रवा मुनिपुङ्गवः। एह्येहि पुत्र धर्मज्ञ सिद्धं कार्यं त्वदीहितम् ॥३६॥
अनेन तपसा व्यक्तं लोकपालो भविष्यसि। इत्युत्क्वा स्वाश्रमं निन्ये पुत्रं पुत्रवतां वरः ॥३७॥
रम्यं मुनिजनाकीर्णं नानाकुसुमपादपम्। ततः स्वस्थमना भूत्वा निवृत्तात्मप्रयोजनः ॥३८॥
रामायणं भविष्यत्स श्रावयामास सादरात्। कालेन महता तेन तपसा समुपार्जितम् ॥३९॥
प्राददावात्मपुत्राय गदां शरनिवारिणीम्।
ततः पितुर्वाक्यविबुद्धमानसो गदां गृहीत्वा शरवारणाह्वयाम्।
मनोरमां काञ्चन हर्म्यमालिनीं विवेश लङ्कानगरीं विभीषणः ॥४०॥

इति श्रीवाग्वतीप्रशंसायां विभीषणास्त्रसिद्धिर्नाम द्वितीयोऽध्यायः।

---

विश्रवा भन्दछन् – हे धर्मको यथार्थ रहस्य बुझ्ने छोरा विभीषण ! तिम्रो यहाँ आगमनको प्रयोजन मैले बुझेँ । हे बाबु ! तपस्या विना कुनै पनि कार्यसम्पत्तिको प्राप्ति संभव हुँदैन। हिमालयको रमणीय काखमा सिद्धगण र देवगणको निवासभूमिमा नै भगवान् शिवको मुखारविन्दबाट उत्पन्न हुनु श्रेष्ठ नदी वाग्वती रहेकी छन्। भगवान् शिवको चूडामणिबाट उत्पन्न भएकी रमणीय मणिमती नदी पनि छन्। यी दुवै नदीको दोभानको समीपमा ऊर्ध्वप्रवाह रुद्रधाराजलतीर्थले भक्तहरूको सम्पूर्ण मनोरथलाई पूर्ण तुल्याउँछ। यस्तो पवित्र पुण्य तीर्थ विराजमान छ। जो कि पातालगङ्गाको जल भगवान् श्रीरुद्रको चरणोदक नै ऊर्ध्वगामी भै निक्लिइरहेको हो जस्तो लाग्छ। धर्म, अर्थ, काम र मोक्षसम्बन्धी सम्पूर्ण इच्छा परिपूर्ण तुल्याउने यो परम पवित्र तीर्थ हो। त्यहीं गई तिमीले यम–नियमपूर्वक उग्र तपस्या गर्नेछौ ॥२७–३१॥

सम्पूर्ण इन्द्रियहरूलाई जिती मन्त्रजपमा लाग भन्ने पिताको वचन सुनी धर्मात्माहरूमा श्रेष्ठ विभीषण अत्यन्त वेगले हिमालयतिर गए र धर्मको रहस्य बुझ्ने विभीषण श्रीरुद्रधारोदयमा पुग्नेबित्तिकै अति प्रचण्ड तपस्या गर्न लागे। वाग्वतीको जलमा भित्रैदेखि डुबी विभीषणले उग्र तपस्या गरेको थाहा पाई केही दिन पछि पुण्यात्माहरूमा अति प्रेम गर्ने प्रख्यातनामा विश्रवा मुनि आई छोरालाई पानीमा पसी बारम्बार काँप्तै रहेको देखेर साधु साधु भनी धन्यवाद दिए ॥३२–३५॥

विश्रवा मुनिले भने – हे धर्मात्मा बाबु विभीषण ! पुत्र तिम्रो मनोरथ पूर्ण भयो। यस पुण्यप्रद तपस्याको प्रभावबाट निश्चय नै लोकपाल बन्नेछौ। यति आज्ञा गरी पुत्रवान्मा श्रेष्ठ अर्थात् विश्रवाले छोरालाई आफ्नो सुन्दर एवं अनेकौं ऋषिहरूले परिपूर्ण नाना जातका फूल र वृक्षहरूले सुहाएको आश्रममा पुऱ्याए। नित्यकर्महरू सम्पूर्ण समाप्त गरेपछि अत्यन्त पवित्र दिलले बडो श्रद्धा र आदरपूर्वक पछि हुने रामायणकथा सुनाए। यसपछि धेरै कालको तपस्याद्वारा उपार्जन गरिएको शत्रुद्वारा प्रहार गरिएका अनेकौं शस्त्रास्त्र, बाण र खड्ग आदिको प्रहारलाई रोक्ने गदा आफ्नो पुत्र विभीषणलाई प्रदान गरे ॥३७–३९॥

त्यसपछि आफ्ना पिता विश्रवाको त्यो उक्तिद्वारा प्रसन्न भएका विभीषण शरवारण नामक गदा लिएर अलौकिक शोभाले झकिझकाउ भै सुनै–सुनको पर्खालले वारिएको आफ्नो निवासभूमि श्रीलङ्कामा प्रवेश गरे ॥४०॥

यसरी श्रीवाग्वतीप्रशंसाको प्रसङ्गमा विभीषणास्त्रसिद्धि नामको दोस्रो अध्याय सकियो।

# अथ तृतीयोऽध्यायः

वाग्वतीतीरस्थस्यामोघतीर्थस्य महिमवर्णनम्

(वाग्वतीका तीरमा रहेका अमोघ तीर्थको महिमा)

भीष्म उवाच

माहात्म्यं रुद्रधारायाः श्रुतं स्वर्गफलप्रदम्। अथान्यच्छ्रोतुमिच्छामि तीर्थं कामफलप्रदम् ॥१॥

पुलस्त्य उवाच

अत ऊर्ध्वं प्रवक्ष्यामि चैलगङ्गासमुद्भवम्। प्रकामफलदं पुण्यं तीर्थं पापप्रणाशनम् ॥२॥
विष्णोर्भगवतो भीष्म धृतवाराहरूपिणः। चैलान्निपतिता या सा चैलगङ्गेति विश्रुता ॥३॥
वाग्वत्याश्चैलगङ्गायाः सम्भेदे सत्त्वसङ्गमे। दशगङ्गाजलस्नानं पुण्यं स लभते नरः ॥४॥
अत ऊर्ध्वं प्रवक्ष्यामि वाग्वतीभेदपर्वतम्। प्रकामफलदं पुण्यं गोकर्णेन कृताश्रमम् ॥५॥
अमोघे सलिलोद्भेदे वाग्वत्याः स्नाति यो नरः। अमोघं व्रजते लोकं तीर्थसेवी नरोत्तमः ॥६॥
अमोघे वाग्वती तीरे विधिना नियमेन च। तिथौ कृष्णचतुर्दश्यां वास्तव्यं तीर्थसेविना ॥७॥
एकरात्रोषितो भूत्वा तत्रैव नियमेन वै। अर्चयेत् क्षेत्रजं लिङ्गं तीर्थसेवी प्रयत्नतः ॥८॥
पितॄन् सन्तर्पयेद्यस्तु तीर्थसेवी प्रयत्नतः। कुलं तारयते सर्वं दश पूर्वान् दशापरान् ॥९॥
एकं यो भोजयेद् विप्रं सहस्रं भोजितं भवेत्। एकां यः कपिलां दद्याद् गोसहस्रप्रदो भवेत् ॥१०॥
देहमुत्सृजते यस्तु कन्दरान्तर्नदीजले। अप्सरोभिः सह स्वच्छं स्वर्गलोकं स गच्छति ॥११॥
महाश्मजालाचितचारुकन्दरान्नदीजलास्फालनशब्दनादितात्।
विलोक्य मानादपि तीर्थसत्तमाद्विमुक्तपापो भवतीह तीर्थिकः ॥१२॥

इति श्रीवाग्वतीप्रशंसायां तीर्थवर्णनेऽमोघशैलादिवर्णनं नाम तृतीयोऽध्यायः ॥

---

भीष्म भन्दछन् – स्वर्गसमान फलदिने रुद्रधारातीर्थको महिमा श्रवण गरें, अब चिताए अनुसार फल दिने अरू तीर्थहरूको पनि महिमा म सुन्न चाहन्छु ॥१॥

पुलस्त्य भन्दछन् – हे भीष्मजी ! अब चैलगङ्गाबाट उत्पन्न तीर्थको बयान गर्नेछु जो अत्यन्त पवित्र, पापनाशक र प्रशस्त पुण्यफल प्रदान गर्न समर्थ छ। हे भीष्मजी ! वराहरूपधारी भगवान् विष्णुको वस्त्रबाट प्रकट भएकी हुँदा ती नदी चैलगङ्गा नामबाट प्रसिद्ध भइन्। पवित्र चैलगङ्गा र वाग्वतीको दोभानमा नुहाउने मानिसले दशवटै गङ्गाजीमा नुहाएको पुण्य पाउँछ ॥४॥ यसपछि म वाग्वतीले दुई फ्याक पारेको पर्वतको महिमा बताउनेछु। अनन्त पुण्य दिने जुन तीर्थमा गोकर्णले आश्रम बनाएका थिए। वाग्वती प्रकट हुने अमोघ फलदायक तीर्थमा जसले वाग्वतीमा स्नान गर्दछ, त्यस्तो तीर्थसेवी उत्तम मानिस अमोघ लोकमा जान्छ ॥२-६॥

वाग्वतीतटमा विद्यमान अमोघ तीर्थमा विधिपूर्वक नियमले कृष्णपक्षको चतुर्दशी तिथिमा तीर्थसेवी मानिस बस्नुपर्दछ। त्यहाँ एकरात उपवास बसी, नियमपूर्वक तीर्थसेवी साधकले बडो श्रद्धासँग क्षेत्रज लिङ्गको पूजा गर्नुपर्दछ। जुन तीर्थयात्री यहाँ विधिपूर्वक पितृहरूलाई तर्पण गर्दछ, त्यसले दश पुस्ता पहिलेका र दशपुस्ता पछिका पितृहरूलाई तारी सम्पूर्ण वंशको उद्धार गर्दछ। त्यस तीर्थमा एकमात्र ब्राह्मणलाई भोजन गराउनाले हजारौं ब्राह्मणभोजन गराएको फल प्राप्त हुन्छ। त्यस्तै एउटी कैली गाई दान गर्नाले हजार गाई दान गरेको फल पाउँछ। यस पवित्र पर्वतको भित्र रहेको नदीजलमा जसले देहत्याग गर्दछ, त्यो साधक स्वेच्छापूर्वक अप्सराहरूका साथ स्वर्गलोकमा रमाउँछ। ठूला ठूला ढुङ्गाहरूले खचिखचाउ भएको सुन्दर आकृतिको कन्दराले विशेष सुहाएको पर्वतमा र नदीको जलमा ठक्कर खानाले मधुर ध्वनि गुञ्जायमान हुन्छ। त्यस उत्तरतीर्थको दर्शन मात्रले नै तीर्थयात्रीहरू निष्पाप बन्दछन् ॥७-१२॥

यसरी श्रीवाग्वतीप्रशंसामा तीर्थवर्णनको प्रसङ्गमा अमोघ शैलादिवर्णन नामको तेस्रो अध्याय सकियो।

# अथ चतुर्थोऽध्यायः

वाग्वतीद्वारशोभावर्णनम् (वाग्द्वारको शोभावर्णन)

पुलस्त्य उवाच

अत ऊर्ध्वं प्रवक्ष्यामि वाग्वतीद्वारमुत्तमम्। महानागालयं रम्यं महाश्मशकलालयम् ॥१॥
नानावृक्षलताकीर्णं नानापुष्पोपशोभितम्। नानाविहगसङ्घुष्टं नानाषट्पदनादितम् ॥२॥
सरित्सलिलभङ्कारशब्दसङ्घातभीषणम्। क्रीडास्थानं महागौर्या महातीर्थं फलप्रदम् ॥३॥
नागाङ्गनाभिर्यक्षीभिरासुरीभिस्तथैव च। देव्याः प्रसादनार्थेन सेव्यते यत्र वाग्वती ॥४॥
मिश्रकेशी घृताची चालम्बुषा बुद्बुदा तथा। ऋतुस्थला च रम्भा च मेनका पुञ्जिकस्थला ॥५॥
अन्याश्चाप्सरसः सर्वदिव्याराधन तत्पराः। सेवन्ते क्रीडनार्थेन वाग्वती यत्र निर्गताः ॥६॥
कुम्भयोनेरगस्त्यस्य तीर्थं तत्र प्रकामदम्। ह्रदोऽनन्तस्य नागस्य तत्र तीर्थं प्रकामदम् ॥७॥
तीर्थिकैरसकृज्जुष्टं प्रकामफलदं शुभम्। उमातीर्थमिति ख्यातं तीर्थं तत्रैव दृश्यते ॥८॥
अनन्ततीर्थमासाद्य संस्नाति यस्तु मानवः। अनन्तभुवने रम्ये मोदते नागिनीगणैः ॥९॥
अगस्त्यतीर्थमासाद्य संस्नाति यस्तु मानवः। मोदते मुनिकन्याभिरगस्त्यभवने शुभे ॥१०॥
उमातीर्थं समासाद्य स्नायते यस्तु मानवः। स्त्रीषु सौभाग्यमाप्नोति स्त्री च पुंसि न संशयः ॥११॥
कृतोत्थानात्पवित्राङ्ग्या भूमिः साऽतिमनोरमा। सौन्दर्येणैव वाग्वत्याः सुन्दरीत्यभिधीयते ॥१२॥
अत ऊर्ध्वं प्रवक्ष्यामि विमलाम्बुदचुम्बितम्। वाग्वतीप्रभवं पुण्यं सुरासुरनिषेवितम् ॥१३॥

पुलस्त्य भन्दछन् – म अब उत्तम वाग्वतीद्वारको वर्णन गर्नेछु, जो ठूला ठूला नागहरूको निवासस्थानका रूपमा रहेको छ, जो अत्यन्त सुन्दर र ठूला ठूला ढुङ्गाहरूले चिनिएको छ, जो अनेकौं किसिमका रुख र लहराहरूले जताततै ढाकिएको छ, जो नाना प्रकारका फूलहरूले सुशोभित छ, जो अनेकौं पक्षीहरूले कलरव गरिएको छ, जो अनेक किसिमका भमराका वथानले गुञ्जायमान भइरहेको छ, जो नदीजलको झर झर र झन् झन् आवाजले केही भयभीत तुल्याउने खालको छ र जो फेरि महागौरीको क्रीडाभूमिका रूपमा रहेकोछ। ठूला ठूला तीर्थको स्नानबाट मिल्ने पुण्य यस तीर्थको स्नानले सहजै मिल्दछ। जुन ठाउँमा भगवती श्रीगौरीलाई प्रसन्न तुल्याउने लक्ष्य लिई नागपत्नी, यक्षिणी, किन्नरी, गन्धर्वरमणी, असुररमणीहरू र तीर्थको उपासनामा संलग्न साधकहरूद्वारा वाग्वती उपासित छिन् ॥१–४॥

जहाँ वाग्वती प्रकट भएकी छन्, त्यहीं मिश्रकेशी, घृताची, अलम्बुषा, बुद्बुदा, ऋतुस्थला, रम्भा, मेनका, पुञ्जिकस्थला र अरू सम्पूर्ण अप्सराहरू भगवती महागौरीको आराधनामा तत्परभै क्रीडा गर्दछन्। त्यही नै साधकको धर्म, अर्थ, काम र मोक्ष सम्बन्धी सम्पूर्ण मनोरथ परिपूर्ण गराउने अगस्त्यतीर्थ र अनन्तनाग विराजमान हुनुभएको सम्पूर्ण इच्छा पूर्ण गरिदिने तीर्थराज पनि रहेको छ। अनन्त पुण्यफल प्रदान गर्ने प्रख्यात उमातीर्थको पनि त्यहीं नै दर्शन पाइन्छ। जुन शुभतीर्थमा तीर्थयात्रीहरू बारम्बार जाने गर्दछन् ॥५–८॥

जुन साधकले अनन्ततीर्थमा गई नुहाउँछ, त्यो साधक नागिनीगणहरूका साथ अनन्तलोकमा गई आनन्दभोग गर्दछ। जुन मनुष्यले अगस्त्यतीर्थमा गई स्नान, दान र उपवास आदि शुभ कार्य गर्दछ, त्यो साधक भक्तिमती मुनिकन्याहरूका साथ ऋषिराज अगस्त्यजीको पुण्य निवासस्थानमा रहेर शुभ कर्म गर्दै आनन्दका साथ सुखसम्पत्तिको उपभोग गर्दछ। यस्तै जुन साधक उमातीर्थमा गई स्नान गर्दछ, त्यसले सौभाग्यशालिनी पत्नी प्राप्त गर्दछ। यही रीतले नारीले स्नान गर्दा मनोनुकूलमन श्रेष्ठ पति प्राप्त गर्दछिन्। यस कुरामा कुनै शङ्का छैन। अत्यन्त पवित्र अङ्ग हुनु भएकी श्रीवाग्वतीको प्रादुर्भावबाट यी भूमि अत्यन्त मनोहर छ। वाग्वतीको सौन्दर्यबाट नै त्यहाँको भूमिलाई सुन्दरी भनिएको छ। यसपछि विमल मेघद्वारा चुम्बित, पुण्यात्मा देवताहरू र दानवगणहरूले समेत सेवा गरिएको वाग्वतीप्रभव तीर्थको वर्णन गरिनेछ ॥९–१३॥

देवदानवगन्धर्वयक्षराक्षससाधुभिः । उपस्पृष्टजले पुण्ये रुद्रलोकफलार्थिभिः ॥१४॥
वाग्वतीप्रभवे तीर्थे संस्नाति यस्तु मानवः । काञ्चनेन विमानेन रुद्रलोकं स गच्छति ॥१५॥
महामृगाध्यासितशृङ्गशालिनः प्ररुह्यमानादपि पर्वतोत्तमात् ।
विमुक्तपापो भवतेऽभिषेकवत् कृताभिषेकाः किमु वाग्वतीजलात् ॥१६॥

इति श्रीवाग्वतीप्रभवतीर्थवर्णनं नाम चतुर्थोऽध्यायः ।

---

रुद्रलोकको फल चाहने देवता, दानव, गन्धर्व, यक्ष, राक्षस आदिका साथ समाजका साधु सन्तद्वारा स्नान, आचमन आदि शुभकार्य गरिने वाग्वतीप्रभव तीर्थमा जसले स्नान गर्दछ, त्यो व्यक्ति सुवर्णमय विमानमा बसी रुद्रलोकमा प्राप्त हुन्छ। महामृग भगवान् नृसिंह विराजमान हुनुभएको अत्यन्त अग्लो शिखरले सुहाएको उत्तम पर्वतमा आरोहण गर्दा मात्र नुहाए समान फल पाएर साधक निष्पाप बन्दछ। वाग्वतीको जलमा स्नान, आचमन आदि गरिसकेपछि त निःसन्देह त्यो साधक मुक्त हुन्छ हुन्छ, यो ध्रुव सत्य हो ॥॥१४–१६॥

यसरी वाग्वतीप्रभव तीर्थवर्णन नामको चारौँ अध्याय यहीँ सिद्धियो ।

# अथ पञ्चमोऽध्यायः

वाग्वतीप्रभवतीर्थस्य महिमा प्रभावतीवर्णनञ्च
(वाग्वतीप्रभवतीर्थको महिमा र राजकुमारी प्रभावतीको परिचय)

पुलस्त्य उवाच

वर्णा धमेषु सर्वेषु सत्त्वेष्वश्राद्धिकेषु च । नाख्यातव्यमिदं पुण्यं पुराणं पापबुद्धिषु ॥१॥
ब्राह्मणेभ्यश्च वैश्येभ्यः क्षत्रियेभ्यस्तथैव च । वर्णोत्कर्षकशूद्रेभ्य स्तीर्थयात्रा प्रचक्ष्यते ॥२॥
तस्मात्सत्कृत्य यत्नेन व्याख्यातव्यं शुभार्थिना । ब्राह्मणेषु विशेषेण पुराणं पुण्यवर्धनम् ॥३॥
रम्ये गङ्गातटे पुण्ये भीष्मः शन्तनुनन्दनः । तीर्थयात्राप्रवक्तारं पुलस्त्यं मुनिमब्रवीत् ॥४॥

भीष्म उवाच

श्रुतः श्रुतफलोद्भूतस्तीर्थस्य गुणविस्तरः । पुनः कौतूहलं किञ्चिन् मम चेतसि वर्तते ॥५॥
वाग्वतीप्रभवस्थाने तीर्थानां प्रवरे शुभे । तस्मिन्नपि महाप्राज्ञ तपः केन कृतं पुरा ॥६॥
एवं पृष्टो महाप्राज्ञो गङ्गापुत्रेण धीमता । व्याजहार शुभं वाक्यं पुलस्त्यो मुनिसत्तमः ॥७॥
अस्मिंस्तीर्थे तपःकृत्वा राजपुत्री प्रभावती । उमाया वरदानेन प्रद्युम्नमलभत्पतिम् ॥८॥

---

पुलस्त्य भन्दछन् – संसारमा रहेका तल्लातहका वर्ण, श्रद्धारहित र दुष्टबुद्धि व्यक्तिलाई यो पुण्यप्रद पुराण भन्नुहुँदैन। ब्राह्मण, क्षत्रिय, वैश्य, उत्तम शूद्रहरूलाई पनि तीर्थयात्राको कथा भन्नु जायज हुन्छ। यस कारण पुण्य चाहने साधकले विशेषरूपबाट ज्ञानी, ब्राह्मण वक्तालाई हृदयतः सत्कार गरेर उनको मुखबाट यो पुण्यवर्धक कथा सुन्नु अत्यन्त उचित हुन्छ। अत्यन्त सुन्दर एवं पवित्र गङ्गा किनारमा राजा शन्तनुका सुपुत्र भीष्मले तीर्थयात्राको महिमा बताउने पुलस्त्य मुनिसँग भने ॥१–४॥

भीष्म भन्दछन् – फलप्रद शास्त्रहरूको सारभूत तीर्थहरूको महात्म्य मैले श्रवण गरेँ तापनि मेरो मनमा केही जान्ने ठूलो उत्कण्ठा छ। अत्यन्त पुण्य दिने शुभ तीर्थहरूमा श्रेष्ठ वाग्वतीप्रभव तीर्थ रहेको स्थानमा पहिले कुन कुन पुण्यात्माले तपस्या गरेका थिए ? हे महाप्राज्ञ ! त्यस विषयमा राम्ररी बताउनुहोस्। यसरी बुद्धिमान् गङ्गापुत्र भीष्मले प्रश्न गर्नुभएपछि महापण्डित मुनिश्रेष्ठ पुलस्त्य पुण्यप्रद उपाख्यान बताउन थाल्नुभयो। यसै वाग्वतीप्रभवतीर्थमा तपस्या गरी राजपुत्री प्रभावतीले उमादेवीको वरदानबाट प्रद्युम्नलाई पतिका रूपमा प्राप्त गरेकी थिइन् ॥५–८॥

भीष्म उवाच

प्रभावतीति विख्याता कस्य राज्ञः कुलोद्भवा। कस्योपदेशाद्देवर्षे तपस्तस्मिंश्चकार ह ॥९॥

पुलस्त्य उवाच

तीरमादाय गण्डक्या यावत्तद्वाग्वतीतटम्। पूर्वापरायतस्याद्रेरधस्थाच्चन्दनागिरेः ॥१०॥
सुप्रभा नाम विख्याता पुरी स्वर्गपुरोपमा। तस्यामधिपतिः श्रीमान् महेन्द्रदमनो नृपः ॥११॥
रूपलक्षणसम्पन्ना जीवादपि गरीयसी। देवी प्रभावती नाम भगिनी तस्य भूपतेः ॥१२॥
सखीभिरसकृद्यत्नैर्वरार्थं प्रतिबोधिता। पतिं न काङ्क्षते सा हि दैत्यदानवयोः कुले ॥१३॥
अनिच्छन्तीं समुत्पत्य भगिनीं दैत्यसत्तमः। न ददौ प्रार्थ्यमानोऽपि वरार्थं दैत्यदानवैः ॥१४॥
उद्यानानि विचित्राणि चन्दनागिरिमूर्धनि। प्रीत्यर्थं कारयामास भगिन्या दैत्यसत्तमः ॥१५॥
वाग्वतीं च ह्रदीभूतां कमलोत्पलभूषिताम्। क्रीडार्थं निर्ममे देव्या भगिन्याः स महीपतिः ॥१६॥
तस्य राज्ञः प्रतापेन रक्षिता वरसुन्दरी। न शक्यते बलान्नेतुं कैश्चिदप्यमरादिभिः ॥१७॥
अतो निर्भयसञ्चारा राजपुत्री प्रभावती। तपोयोगरता नित्यं रूपातिशयशालिनी ॥१८॥
नानारत्नालये रम्ये महेन्द्रदमनालये। क्रीडोद्यानेषु रम्येषु चित्रपुष्पाकुलेषु च ॥१९॥
तोयावगाढे वाग्वत्याः कमलोत्पलभूषिते। सुरम्येषु नगाग्रेषु दरीषु कन्दरासु च ॥२०॥
मोहयन्ती मनो यूनां रूपेणाप्रतिमेन वै। सखीभिः सह सा देवी रराम रुचिरानना ॥२१॥
नियमैरुपवासैश्च साभिषेकैश्च सन्ततम्। पूजाभिश्च विचित्राभिर्विधानैरपरैरपि ॥२२॥
तपोयोगरता सा हि महर्षेर्वचनेन वै। उमामाराधयामास वाग्वतीप्रभवे गिरौ ॥२३॥
ततः कालेन दीर्घेण वरदानार्थमागताम्। योगीश्वरीमुमादेवीं ददर्श शिवसुन्दरीम् ॥२४॥
दृष्टमात्रेण सा देवीं प्रणम्य विनयेन वै। स्तुत्वा स्तुतिशतैः पुण्यैरिदं वचनमब्रवीत् ॥२५॥
पुण्येन महता देवी दृष्टं त्वत्पादपङ्कजम्। तपःसुसिद्धिरभवन्निश्चितं मम काङ्क्षितम् ॥२६॥

---

भीष्म प्रश्न गर्दछन् – हे देवर्षि पुलस्त्यजी ! प्रभावती नामले विख्यात राजकुमारी कुन राजाको कुलमा पैदा भएकी हुन् ? उनले कसको उपदेश पाई वाग्वतीप्रभव पुण्यतीर्थमा तपस्या गरेकी थिइन्।

पुलस्त्य भन्दछन् – त्रिशूलगण्डकीको किनारदेखि वाग्वतीको किनारसम्म पूर्वपश्चिम फैलिएको चन्दनागिरिभन्दा तल सुप्रभानाम भएको स्वर्गको अमरावतीजस्तै अत्यन्त प्रसिद्ध पुरी थियो जसलाई राजधानी बनाएर महाबली इन्द्रदमन राज्य गर्दथे। ती दैत्यराज महेन्द्रदमनकी प्राणभन्दा पनि प्यारी सर्वलक्षणसम्पन्न प्रभावती नामकी बहिनी थिइन्। सखीहरूले बारम्बार प्रयत्नपूर्वक सम्झाउदा पनि ती प्रभावती दैत्य दानव वंशमा उत्पन्न वरलाई मन पराउन्नथिन्। त्यसकारण महेन्द्रदमनले दैत्य दानवहरूबाट अनेकौं प्रार्थना गरिंदा पनि बहिनीको इच्छाविरुद्ध कसैलाई दिएनन् ॥१०–१४॥

दैत्यहरूको अधिपति महेन्द्रदमनले बहिनीको आनन्दका लागि चन्दनागिरिको टाकुरामा विचित्र बगैंचा तयार गरे। राजा महेन्द्रदमनले वाग्वतीलाई थुनी तलाउ बनाएर र त्यसमा नानाप्रकारका कमलहरू लगाए। उनले हरेक किसिमबाट प्यारी बहिनी प्रभावतीका निमित्त क्रीडाका साधन जुटाए। राजा महेन्द्रदमनको प्रतापद्वारा सुरक्षित भएकी अलौकिक सुन्दरी प्रभावतीलाई देवता, दैत्य र दानव आदि कोही पनि बलपूर्वक हरण गर्न असमर्थ थिए। सुरक्षित भएकै कारण विना डर, बेरोकटोक भ्रमण गर्ने सुन्दरताकी प्रतिमूर्ति राजकुमारी प्रभवती निरन्तर योगाभ्यास र तप गरिरहेकी थिइन्। नानाथरी रत्नहरूद्वारा निर्मित, अत्यन्त सुन्दर दाजु महेन्द्रदमनको दरवारमा रहेको रंगीबिरंगी फूलले सजिएका बगैंचामा उनी विहार गर्न थालिन् ॥१५–१९॥

चन्द्र कमल र सूर्यकमलहरूद्वारा भूषित वाग्वतीको जलले परिपूर्ण तलाउमा सुन्दर टाकुरामा गुफा तथा कन्दराहरूमा उनी विहार गर्दथिन्। आफ्नो अनुपम रूपसौन्दर्यका कारण युवकहरूको मनलाई मोहित गराउँदै सुवदना प्रभावती सखीहरूका साथ क्रीडा गरी रमाइरेकी थिइन्। त्रिकाल अभिषेक र नियमपूर्वक उपवास गरी नानाप्रकारका पूजाका विधिविधानले र अरू विधानहरूले पनि उनले भगवतीको आराधना गरिरहेकी थिइन् ॥२०–२२॥

निरन्तर तपस्या र योगचर्यामा तत्परभै महर्षिको उपदेशद्वारा प्रभावतीले वाग्वतीको उद्‌गम गराउने पर्वतमा भगवती श्रीउमाको आराधना गरेकी थिइन्। तपस्या र आराधनाको धेरै समय बितिसकेपछि वरदान दिनका लागि आउनुभएकी श्रीयोगमाता शिवसुन्दरी उमादेवीको प्रभावतीले दर्शन गरिन्। आराध्य जननीको दर्शन पाउने बित्तिकै प्रभावतीले अत्यन्त नम्रतासाथ प्रणाम गरिन् सयौं पवित्र स्तुतिहरूद्वारा प्रार्थना गरी यो बिन्ती गर्न लागिन् – हे देवी उमा ! ठूलो पुण्यले गर्दा हजुरका चरण कमलको दर्शन गर्न पाएँ, मेरो तपस्या सिद्धभयो र मेरो इच्छा पनि साँच्चिकै सिद्धभयो ॥२३–२६॥

तस्यास्तद्वचनं श्रुत्वा वरदा पर्वतात्मजा। अब्रवीदीदृशं वाक्यं प्रहर्षोत्फुल्ललोचना ॥२७॥
एवमेवेति सुश्रोणि निश्चितं मम दर्शनात्। सिद्धं ते काङ्क्षितं वस्तु पुण्यञ्चापि प्रवर्धते ॥२८॥
आगमिष्यति सोऽत्रैव प्रद्युम्नो रूपिणां वरः। भविष्यति विवाहश्च सह तेन वरानने ॥२९॥
त्वं गमिष्यसि हे भद्रे द्वारकाञ्च मनोरमाम्। इत्युक्त्वा हिमवत्कन्या तत्रैवान्तरधीयत ॥३०॥
ततः प्रहृष्टा दितिजेन्द्रकन्यका तपःश्रमाक्लान्तविलोचनोत्पला।
प्रभावती पङ्कजगर्भकोमला विनिर्ययौ स्वं भवनं मनोरमम् ॥३१॥

इति श्रीवाग्वतीप्रशंसायां प्रद्युम्नविजये गौरीवरप्रदानं नाम पञ्चमोऽध्यायः ॥

---

सुप्रभावको यो बिन्ती सुनी हर्षले प्रफुल्ल भएकी वरदात्री पर्वतराजकन्या देवी पार्वतीले भन्नुभयो। हे नितम्बिनी सुन्दरी ! मेरो दर्शनबाट निश्चय नै तिम्रो मनोरथ सिद्ध हुनेछ र पुण्यवृद्धि पनि हुनेछ। हे सुमुखी प्रभावती ! ती सुन्दरहरूमा श्रेष्ठपुरुष प्रद्युम्न यहीँ नै आइपुग्नुहुनेछ र उहाँकै साथ तिम्रो विवाह हुनेछ। हे कल्याणी ! तिमी मनोहर द्वारकापुरीमा प्रवेश गर्नेछ्यौ। यति आज्ञा गरी हिमालय पुत्री पार्वती त्यहीँ नै अन्तर्धान हुनुभयो। भगवती उमा अन्तर्धान हुनु भएपछि तपस्याको परिश्रमले वैलाएका नयनले टुलुटुलु हेरिरहेकी र कमलको भित्री भागसमान कोमल देहलता धारण गरेकी दैत्यराजकी सुपुत्री प्रभावती प्रसन्न हुँदै आफ्नो सुन्दर भवनमा प्रवेश गरिन् ॥२७-३१॥

यसरी वाग्वतीप्रशंसामा प्रद्युम्नविजयमा गौरीलाई वरप्रदान भन्ने कथामा आधारित पाँचौँ अध्याय पूर्ण भयो।

## अथ षष्ठोऽध्यायः

भगवतः श्रीकृष्णस्य नेपालयात्रा (भगवान् श्रीकृष्णको नेपालयात्रा)

पुलस्त्य उवाच

ततो देव्याः प्रभावेण प्रद्युम्नो रुक्मिणीसुतः। प्रणम्य पितरं मूर्ध्ना चेदं वचनमब्रवीत् ॥१॥

प्रद्युम्न उवाच

भगवन्नेतुमिच्छामि तीर्थयात्रां यदृच्छया। शम्बरस्य वधोद्भूतं पाप्मानं मोक्तुमर्हसि ॥२॥
इत्युक्तमात्रेण तदा प्रद्युम्नेन महात्मना। व्याजहार शुभं वाक्यं भगवान् रुक्मिणीपतिः ॥३॥

श्रीकृष्ण उवाच

नेष्यामि पुत्र हे वीर ! तीर्थयात्रां यदृच्छया। यात्रोत्सवरतानां हि कालो रम्यः प्रवर्तते ॥४॥
पश्य पद्मोत्पलाकाशैः पूर्यते दीर्घिकाजलम्। प्रसन्नसलिला जाताः सर्वाश्चैव समुद्रगाः ॥५॥
दृश्यते धरणी रम्या हंसमालाऽमलांशुका। नीलमेघविनिर्मुक्ता निर्मलाश्च दिशो दश ॥६॥

---

पुलस्त्य भन्दछन् – त्यसपछि जगज्जननी महागौरी श्रीउमाको वरदानको प्रभावबाट रुक्मिणीका पुत्र श्रीप्रद्युम्न आफ्ना पिता श्रीकृष्णलाई प्रणाम गरी शिर झुकाएर बिन्ती गर्न लागे ॥१॥

प्रद्युम्न भन्दछन् – हे भगवान् ! हे पिताजी ! म स्वेच्छापूर्वक हजुरलाई साथ लिएर तीर्थयात्रा गर्न चाहन्छु, त्यसकै माध्यमबाट हजुरले शम्बरासुरको वध गरेका कारण मलाई लाग्न आएको पापबाट छुट्यउनुहोस्। आफ्ना पुत्र वीरशिरोमणि श्रीप्रद्युम्नले यति बिन्ती गरिसकेपछि रुक्मिणीपति भगवान् श्रीकृष्णले भन्न लाग्नुभयो ॥२- ३॥

श्रीकृष्ण आज्ञा गर्नुहुन्छ – हे वीर पुत्र प्रद्युम्न ! म तिमीलाई धेरै तीर्थहरूको यात्रा गराउनेछु किनकि यात्रा, उत्सव आदिमा तत्पर मानिसहरूको समय रमाइलो गरी व्यतीत हुन्छ। हेर बाबु ! स्थलकमल, चन्द्रकमल आदिबाट सुहाएका तलाउहरूमा पानी भरिभराउ छ। स्वच्छ स्फटिकसमान जलमा चन्द्रमा र तारासहित आकाशको छाया परिरहेको छ। सम्पूर्ण नद, नदी, खोलानालाहरू निर्मल देखिन्छन्। हंसमय श्वेतवसन धारण गरेकी धर्ती ज्यादै सुन्दर देखिएकी छिन्। वर्षाकालको बादलबाट मुक्त भएका दशै दिशा निर्मल देखिएका छन् ॥४-६॥

पुलस्त्य उवाच

इत्युक्त्वा भगवान् विष्णुः शङ्खचक्रगदाधरः। आरुरोह गरुत्मन्तं प्रद्युम्नस्तु रथोत्तमम् ॥७॥
तत्क्षणादेव देवेशः सपुत्रो गरुडध्वजः। तीर्थयात्राटनार्थेन द्वारकामजहात् पुरीम् ॥८॥
देविकाप्रभवं चैव वितस्तिप्रभवं तथा। प्रभवं च सरस्वत्या यमुनाप्रभवं तथा ॥९॥
सिन्धोश्च प्रभवं चैव शतद्रुप्रभवं तथा। प्रभवं चैव गङ्गाया गोमतीप्रभवं तथा ॥१०॥
सरयूप्रभवं चैव गण्डकीप्रभवं तथा। सप्तलीति ह्रदं चैव कौशिकीप्रभवं शुभम् ॥११॥
अनेकानि च तीर्थानि भ्रमन्नन्यानि चैव हि। वाग्वतीप्रभवं प्राप्तः सपुत्रो भगवान् हरिः ॥१२॥
ततः सम्प्राप्तमात्रेण नारदो मुनिसत्तमः। स्तुत्वा स्तुतिशतैः पुण्यैरिदं वचनमब्रवीत् ॥१३॥
भगवन् पुण्डरीकाक्ष सूर्यकेतुर्नराधिपः। चिरकालोषितस्तत्र श्वेतकापुरकाङ्क्षया ॥१४॥
सा राजदुहिता देवी प्रद्युम्नाय प्रकल्पिता। नाम्ना चन्द्रावती गीता चन्द्रबिम्बनिभानना ॥१५॥
तां हर्तुमीहते देवीं महेन्द्रदमनोऽसुरः। सम्मोहादेव दुर्बुद्धिरप्रदानान्महीपतेः ॥१६॥
अतः पूर्णेन्दुवदनां नीलोत्पलदलेक्षणाम्। रूपातिशायिनीं देवीं विवाहे गृह्यतां विभो ॥१७॥
दीर्घकालनिरुद्धाङ्गी चन्दनागिरिमालया। वाग्वती च सरिच्छ्रेष्ठा गङ्गां द्रष्टुं समीहते ॥१८॥
पुनः प्रभावती नाम राजपुत्री यशस्विनी। प्रद्युम्नं रूपिणां श्रेष्ठं काङ्क्षते तपसाऽसकृत् ॥१९॥
अतोऽद्रिशिखरे रम्ये प्रद्युम्नेन महात्मना। अद्यैकां रजनीमत्र वास्तव्यं मम शासनात् ॥२०॥
ततः श्रुत्वा मुनेर्वाक्यं भगवान् मधुसूदनः। अब्रवीदीदृशं वाक्यं विस्मयोत्फुल्ललोचनः ॥२१॥

---

पुलस्त्य भन्दछन् – यसरी आफ्ना सुपुत्र श्रीप्रद्युम्नलाई आज्ञा दिएर चारहातमा शङ्ख, चक्र, गदा र पद्म लिई भगवान् श्रीकृष्ण गरुडमा सवार हुनुभयो र श्रीप्रद्युम्न पनि उत्तम एक रथमा सवार हुनुभयो। आफ्ना सुपुत्रसहित भगवान् श्रीकृष्णले तीर्थाटनका लागि द्वारकापुरीबाट प्रस्थान गर्नुभयो। तीर्थभ्रमणको क्रममा भगवान् श्रीकृष्ण र प्रद्युम्न क्रमशः देविकानदीको उद्‌गम तीर्थ, वितस्ताको उद्‌गम तीर्थ, सरस्वतीको उद्‌गम तीर्थ र यमुनाको उद्‌गम हुने तीर्थमा जानुभयो। यसरी नै श्रीसिन्धु नदीबाट बन्न आएको तीर्थ, सतलजबाट बनेको तीर्थ, गङ्गाबाट बनेको तीर्थ, गोमतीबाट बनेको तीर्थ र सङ्गममा जानुभयो। यसका अतिरिक्त सरयूनदीबाट बनेका पुण्य तीर्थहरू, गण्डकी नदीका मनोरम तीर्थहरू र सप्तली सरोवर र कोशीनदीबाट बनेका तीर्थमा जानुभयो। यस्ता यस्ता अनेकौं तीर्थहरूमा भ्रमण गर्दै वाग्वतीको उद्‌गमस्थल शिवपुरी तीर्थमा पुत्रसहित भगवान् श्रीकृष्ण आउनुभयो ॥७-१२॥

भगवान् आउनासाथ उत्तम मुनि नारदजीले पुण्यमय सयौं स्तुतिवचनद्वारा भगवान् श्रीकृष्णको स्तुति गरी बिन्ती गरे – कमलको दल जस्तै नयनले सुहाउनुभएका हे श्रीकृष्ण ! राजा सूर्यकेतु श्वेतका पुरीको इच्छाले त्यहीं धेरै समय अघिदेखि बसिरहेका छन्। चन्द्रबिम्बजस्तै सुन्दर अनुहारले सुहाएकी उनै राजर्षिकी छोरी प्रख्यात राजकुमारी चन्द्रावती देवीले पनि श्रीप्रद्युम्नलाई पतिका रूपमा प्राप्त गर्न सङ्कल्प गरेकी छिन् ॥१५॥

चन्द्रावतीको रूप र माधुर्यमा मुग्ध बनी मोहवश दुष्टबुद्धि भएको राक्षस महेन्द्रदमन ती चन्द्रावती देवीलाई हरण गर्न चाहन्छ। यसकारण हे प्रभु ! पूर्णचन्द्रमुखी, नीलकमलका दल जस्ता आँखा भएकी ज्यादै सुन्दरी चन्द्रावती देवीलाई विवाह गरी आफ्नी अर्धाङ्गिनी बनाउनुहोस्। चन्दनागिरिको पर्खालद्वारा धेरै समयदेखि जलरोकिएकी नदीहरूमा उत्तम श्रीवाग्वती पनि श्रीगङ्गाजीको दर्शन गर्न चाहन्छिन् ॥१६-१८॥

त्यस्तै फेरि प्रभावती नामकी यशस्विनी सूर्यकेतुकी राजकुमारी पनि सुन्दरहरूमा श्रेष्ठ प्रद्युम्नलाई पतिका रूपमा प्राप्त गर्ने इच्छा लिई बारम्बार तपस्या गरिरहेकी छन्। यसकारण यो सुन्दर गिरिराजको शिखरमा महात्मा प्रद्युम्नका साथ आजको एक रात हे भगवान् ! मेरो प्रार्थनाबाट हजुर विराजमान हुनुहोस्। त्यसपछि श्रीनारदजीको त्यो वाक्य सुनेर भगवान् मधुसूदन आश्चर्यचकितभै दुबै आँखा प्रफुल्ल बनाउँदै भन्नु लाग्नुभयो ॥१९-२१॥

सम्बन्धित्वं नरपतेः सूर्यकेतोर्विशेषतः । कथं नेच्छामि देवर्षे अभिप्रेतं त्वया पुनः ॥२२॥
अनिहत्य दुरात्मानं शक्रशत्रुं सुदुर्जयम् । चन्द्रावत्या विवाहस्तु सद्यः किन्तु न शोभते ॥२३॥
हर्तुं चन्द्रावतीं मोहादीप्सतश्च दुरात्मनः । भविष्यति वधस्तस्य प्रद्युम्नेन महात्मना ॥२४॥
अहमप्यागमिष्यामि तस्मिन्नवसरे शुभे । तदा मोक्ष्यामि देवर्षे भित्त्वा शैलं सरिद्वराम् ॥२५॥
तस्मिन्नवसरे पुण्ये देवकण्टकवर्जिते । चन्द्रावत्या विवाहश्च भविष्यति ममाज्ञया ॥२६॥
दृष्टमात्रे विवाहे च चन्द्रावत्यास्तदैव हि । राजर्षेः सूर्यकेतोस्तु गन्तव्यं श्वेतकापुरम् ॥२७॥
अद्यैकां रजनीमत्र रम्येऽस्मिन् शैलमूर्धनि । प्रद्युम्नेन च वास्तव्यं महर्षे वचनात्तव ॥२८॥
इतीरयित्वा वचनं यथेप्सितं दिशं शरच्छुभ्रबलाहकाकुलाम् ।
सुवर्णशैलाग्रसमानरूपिणं खगेन्द्रमारुह्य विनिर्ययौ हरिः ॥२९॥

इति श्रीवाग्वतीप्रशंसायां महर्षिसन्दर्शनं नाम षष्ठोऽध्यायः ॥

---

राजासँगको सम्बन्ध, त्यसमा पनि सूर्यकेतुको सम्बन्ध कसले चाहँदैन ? हे देवर्षि नारदजी ! त्यसमाथि पनि यो प्रस्ताव ल्याउने तपाईंजस्ता देवर्षि हुनुहुन्छ। दुरात्मा दुर्जय इन्द्रको शत्रु महेन्द्रदमनलाई नमारीकन त्यसै हतारमा चन्द्रावतीका साथ विवाह गर्न उचित हुँदैन। चन्द्रावतीको रूपसौन्दर्यमा मुग्ध भएर अज्ञानवश चन्द्रावतीलाई हर्न चाहने त्यस दुरात्माको वध महात्मा प्रद्युम्नद्वारा हुनेछ। त्यस मङ्गलमय अवसरमा म पनि आउनेछु, हे देवर्षि नारदजी ! त्यसै अवसरमा पर्वतलाई फोरेर श्रेष्ठ नदी वाग्वतीलाई पनि मुक्त गराउनेछु॥२२-२५॥

देवताहरूको काँडो नभएको त्यस पुण्य समयमा मेरो आज्ञाद्वारा चन्द्रावतीको पनि विवाह हुनेछ। चन्द्रावतीको विवाह हेर्नेबित्तिकै राजर्षि सूर्यकेतु श्वेतकापुरीमा जानेछन्। हे महर्षि नारदजी ! तपाईंको वचनले गर्दा आज एक रात यो रमणीय पर्वतको टाकुरामा प्रद्युम्न अवश्य बस्नेछन्। श्रीनारदजीका साथ संवाद गरेर आफ्नो इच्छाद्वारा सुमेरूपर्वतको शिखरजस्तै अग्ला श्रीगरुडजीमाथि सवार भई शरद् ऋतुको स्वच्छ मेघमण्डलले व्याप्त दिशातर्फ भगवान् श्रीकृष्ण प्रस्थान गर्नुभयो अर्थात् शहरतिर फर्कनुभयो॥२६-२९॥

यसरी श्रीवाग्वतीप्रशंसामा महर्षि नारदसँगको भेटघाटनामक छैठौं अध्याय पूर्ण भयो।

# अथ सप्तमोऽध्यायः

प्रभावतीविषयकः प्रद्युम्ननारदसंवादः
(प्रभावतीका विषयमा प्रद्युम्न र नारदका बीच संवाद)

पुलस्त्य उवाच

ततः प्रहृष्टहृदयो नारदो मुनिसत्तमः । प्रभावतीं पुरोधाय प्रद्युम्नमिदमब्रवीत् ॥१॥

नारद उवाच

मधुस्त्वं पूर्वदेहेन कामश्चैव त्वमेव हि । या माधवी मधोर्भार्या सैषा देवी प्रभावती ॥२॥
अस्माद्विकल्पमुत्सृज्य प्रतिगृह्णीष्व मानद । मत्प्रदत्तां विशेषेण बाणराजसुतामिमाम् ॥३॥
त्वञ्च रूपवतां श्रेष्ठो रूपाढ्या च प्रभावती । ममाज्ञया विवाहश्च कर्तव्यः सद्य एव हि ॥४॥
इत्युक्त्वा कृतमङ्गल्यो हर्षोत्फुल्लविलोचनः । नारदो भगवान् वाक्यमब्रवीदीदृशं पुनः ॥५॥
अद्यैकां रजनीमत्र कर्तव्या वसतिस्त्वया । गन्तव्यो रथमारुह्य श्वः प्रभाते च स्वालयः ॥६॥
पूर्णचन्द्रानना रम्या कुमुदामोदशालिनी । समागता निशा सेयं सुरतोत्सुककारिणी ॥७॥

---

श्रीपुलस्त्य भन्दछन् – त्यसपछि प्रसन्न चित्त भै मुनिश्रेष्ठ देवर्षि नारद प्रभावतीलाई अगाडि राखी श्रीप्रद्युम्नजीसँग निवेदन गर्न लागे ॥१॥

देवर्षि नारद भन्दछन् – हे वीरशिरोमणि प्रद्युम्नजी ! हजुर पहिलो जन्ममा मधु र कामदेव पनि हुनुहुन्थ्यो। मधुकी माधवी नाम गरेकी तिनै पत्नी यी देवी प्रभावती हुन्। हे मानद प्रद्युम्नजी ! यसो हुँदा नै दुईमन नगरी विशेषतः मैले दिएकी यी बाणराजकी छोरीको पाणिग्रहण गर्नुहोस्। तपाईं रूपवान्हरूमा उत्तम हुनुहुन्छ र प्रभावती पनि रूपका दृष्टिले सर्वोत्तम छिन्। यसै कारण मेरो आज्ञाले छिट्टै विवाह गर्नुहोस्। यसरी पहिले आफ्ना कुरा बताएर मङ्गलका सरसामानहरू जुराउँदै हर्षोत्फुल्ल नयन भएका देवर्षि श्रीनारद फेरि पनि आग्रहसाथ भन्न लाग्नुभयो – आजको एकरात तपाईं यहीं बस्नुहुन्छ। भोलि बिहान सबेरै आफ्नो रथमा बसेर आफ्नो दरबारमा जानु उचित छ। चन्द्रकमलको आमोदजस्तै सुवासयुक्त र सुन्दर पूर्ण चन्द्रको झैं कान्तिले परिपूर्ण प्रभावती नै सुरतमा उत्सुकता प्रदान गर्ने सन्ध्याकालका रूपमा आएकी छन्॥२-७॥

न विद्यते भयं चात्र निश्चयान्मम तेजसा। इत्युक्त्वा नारदो धीमान् स्वेच्छया क्वापि निर्ययौ ॥८॥
ततोऽप्सरोभिरसकृत्सेविते क्रीडया शुभे। विचित्रतरुखण्डाढ्ये चित्रपुष्पलतागृहे ॥९॥
विलसत्कुसुमाकीर्णे निनदद्भ्रमराकुले। निघृष्टकिन्नरोद्गीते विलसन्मृगसेविते ॥१०॥
अङ्के निधाय सुश्रोणीं लज्जमानां प्रभावतीम्। तत्र शैले सुखासीनः प्रद्युम्नो वाक्यमब्रवीत् ॥११॥
पश्य त्वद्वक्त्रपूर्णेन्दुकान्त्या विजितमम्भसि। सङ्कोचं याति कमलं भद्रे चन्द्रांशुशङ्कया ॥१२॥
वाग्वत्या विमले तोये विरुते जलपक्षिणाम्। पिशुनं क्रियते देवि तव नूपुरनिस्वने ॥१३॥
ज्योत्स्नाभिर्विमलाभिर्गामभिषिञ्चन् महीधरम्। विभाति भगवांश्चन्द्रो यामिनीतिलकोपमः ॥१४॥
किञ्जल्ककपिलाङ्गानां षट्पदानां वरानने। समुच्चरन्ति हुङ्कारा विबुद्धे कुमुदाकरे ॥१५॥
क्षिप्तपुष्परजोऽजस्रं वाग्वतीजललासकः। प्रवाति पवनो देवी मन्दमङ्गसुखप्रदः ॥१६॥
मन्दालिकालयोपेतं मन्मनो मोहकारणम्। उद्गीतं किन्नराणाञ्च श्रूयते शुभगध्वनिः ॥१७॥
इत्युक्त्वा रूपिणां श्रेष्ठः प्रद्युम्नः प्रियया सह। स रेमे रजनीमेकां रम्येऽस्मिन् शैलमूर्धनि ॥१८॥
ततः प्रभातसमये राजपुत्री प्रभावती। विनयेनाञ्जलिं कृत्वा प्रद्युम्नमिदमब्रवीत् ॥१९॥
महेन्द्रदमनो नाम भ्राता मम दुरासदः। शम्बरस्य वधं श्रुत्वा सततं त्वयि कुप्यति ॥२०॥
प्रद्युम्न रूपिणां श्रेष्ठ महर्षेर्वचनात्तथा। तस्माद्रम्येऽपि शैलेऽस्मिन्न चिरं स्थातुमर्हसि ॥२१॥
सखी चन्द्रावती चैव नित्यं तव हितैषिणी। विन्यासः स्थाप्यतां यस्माद्वाग्वतीसलिले शुभे ॥२२॥
वचनान्ते ततो देव्याः प्रद्युम्नो रूपिणां वरः। सम्पूज्य वाग्वतीं यत्नैरिदं वचनमब्रवीत् ॥२३॥
रुद्रवक्त्राद्विनिर्याति रुद्रलोकफलप्रदे। दैत्येन्द्रपुण्यकेतोस्तु पताकांशुकसन्निभे ॥२४॥
आसुरीभिश्च यक्षीभिरप्सरोभिस्तथैव च। उपस्पृष्टजले पुण्ये प्रकामफलदायिके ॥२५॥

---

"मेरो प्रतापले गर्दा यहाँ कुनै भय र आशङ्काको वातावरण पनि छैन" यति भनेर बुद्धिमान् श्रीनारद आफ्नो इच्छाले अन्त कतै गए। त्यस पछि जहाँ क्रीडाका लागि बारम्बार अप्सराहरू आउँदछन्, यस्तो सुन्दर विचित्र वृक्षहरूका पङ्क्तिले अत्यन्त शोभायुक्त नाना जातका फूल र लहराहरूको झाँग भएको पर्वतमा जानुभयो। फुलिरहेका फूलहरूले ढकमक्क भएको, भुँभुँ शब्द गरिरहने भ्रमराहरूले भरिभराउ भएको, किन्नरसमूहको मधुर गीतको आलापले ध्वनित भएको, कसैको आफू माथि प्रहार गर्लान् कि भन्ने आशङ्का नभएको, मृगहरूको क्रीडाले अत्यन्त मनोहर भएको, त्यस पर्वतमा बडो आनन्दका साथ बस्नुहुने श्रीप्रद्युम्नले लज्जालु, कृशाङ्गी बारुले कम्मर भएकी प्रभावतीलाई काखमा लिएर भन्न लाग्नुभयो – हे कल्याणी ! हेर तिम्रो मुखरूपी पूर्णचन्द्रको शोभाद्वारा पराजित भएका कमलहरू चन्द्रमाका किरणहरूको शङ्का लिएर पानीमा खुम्चिरहेका छन्। हे देवी प्रभावती ! वाग्वतीको निर्मल स्वच्छ जलमा विहार गर्ने भएका जलपक्षीहरूको कलकलशब्दले तिम्रो पाउजेवको शङ्का पैदा गराएको छ ॥८-१३॥

रात्रि कामिनीको निधारको टीकासमान ऐश्वर्यशाली चन्द्रमा निर्मल किरणहरूद्वारा पृथ्वी र पर्वत दुबैलाई अभिषेक गर्दै सुहाएका छन्। हे सुन्दरमुखी ! प्रफुल्ल भएको चन्द्रकमलको अङ्गमा फुलेका केसरहरूद्वारा पहेँलपुर भएका भमराहरूको भुँभुँ शब्द गुञ्जायमान छ। हे देवी ! निरन्तर फूलको पराग उडाउँदै र वाग्वतीको जल नचाउँदै अङ्गहरूलाई सुख दिने हावा मन्द मन्द गतिले चलिरहेको छ। मन्द मन्द भमराहरूको गुञ्जन सहित मनलाई मोहित गराउने किन्नरगणको उत्कृष्ट गीत सुनिन्छ ॥१७॥ यसरी प्रभावतीलाई बताएर सुन्दर पुरुषमा श्रेष्ठ श्रीप्रद्युम्नले आफ्नी प्रियतमा प्रभावतीका साथ सुन्दर पर्वतको टाकुरामा एकरात रमण गरे ॥१४-१८॥

प्रद्युम्नसँगको रमण पूर्ण भएपछि विहानीपख राजपुत्री प्रभावतीले निकै नम्रतासाथ हात जोरेर श्रीप्रद्युम्नसँग बिन्ती गरिन्। युद्धमा कसैबाट पराजित नहुने मेरा दाजु महेन्द्रदमन शम्बरासुरको वध भएको सुनी सधैँभरि तपाईंमाथि रीस गरिरहन्छन्। सुन्दर पुरुषमा श्रेष्ठ हे प्रद्युम्नजी ! यसकारण महर्षि नारदजीको वचन अनुसार पनि यो पर्वत जतिसुकै रमणीय होस्, तर हजुर यहाँ बसिरहनु उचित हुँदैन। यस्तै मेरी सँगिनी चन्द्रावती पनि सधैं हजुरको नै हित चाहन्छिन्। यसकारण खुब ठूलो जुक्ति निकाली वाग्वतीको पवित्र जलमा प्रेमको नासो अवश्य नै राख्नुहोस्। प्रियतमा प्रभावतीको वचन सुनिसकेपछि उनैको आशय अनुरूप अति सुन्दर श्रीप्रद्युम्नले बडो भक्तिका साथ पूजा गरी वाग्वतीको प्रार्थना गरे ॥१९-२३॥

हे पतितपावनी वाग्वती ! हजुरको रुद्रभगवान्का मुखारविन्दबाट प्रादुर्भाव भएको हो। फेरि हजुरले सम्पूर्ण भक्तहरूलाई रुद्रलोकमा पुर्‍याउनुहुन्छ। हजुर दैत्यराज श्रीप्रह्लादजीको पुण्यकीर्तिको पताकासमान हुनुहुन्छ। असुर, यक्ष, किन्नर आदिका स्त्रीहरू र स्वर्गका अप्सराहरू पनि हजुरको पवित्र जलमा अभिषिक्त भई आफ्नो इच्छाअनुसारको फल प्राप्त गर्दछन् ॥२४-२५॥

मृगेन्द्रशिखरोत्सङ्गे पाविते च निजोदकैः । सुरोपनीतमन्दाररजोरञ्जितवारिणि ॥२६॥
रक्षतां निम्नगे गर्भे सूर्यकेतुसुतामिमाम् । यथा न नीयते तेन महेन्द्रदमनेन सा ॥२७॥
इत्युक्त्वा वाग्वतीतोये विनिक्षिप्य च सुन्दरीम् । आरुरोह रथं चित्रं कामगं मकरध्वजः ॥२८॥
स्वच्छस्फटिकसङ्काशसरिद्वारिविराजिताम् । प्रमत्तभ्रमरालीनविबुद्धकमलाननाम् ॥२९॥
प्रफुल्लकुसुमाकीर्णपर्वतोद्यानकञ्चुकाम् । शरदिन्दुकरापाण्डुराजहंससितांशुकाम् ॥३०॥
विलोक्य धरणीं देवीमुत्तमामिव कामिनीम् । प्रयतो रुक्मिणीसूनुरिदं वचनमब्रवीत् ॥३१॥
उन्नतं पश्य सुश्रोणि दानवानां पुरोत्तमम् । मया विनिहतो यत्र समरे कालशम्बरः ॥३२॥
रुद्रश्चिच्छेद यत्रैव ब्रह्मणः पञ्चमं शिरः । रुचिरं पश्य सुश्रोणि काश्मीरं कुङ्कुमाकरम् ॥३३॥
पश्य पङ्कजगर्भोरु विषयं सिन्धुसंज्ञकम् । पूर्णेन्दुवदने पश्य पश्चाद्देशं पृथक् पृथक् ॥३४॥
ततो विवेशात्मपुरीं मनोरमां मनोरमामोहविधायिविग्रहः ।
पुराङ्गनालोचनलोलषट्पदैर्निपीतवक्त्राम्बुरुहो जनार्दनिः ॥३५॥

इति श्रीवाग्वतीप्रशंसायां प्रद्युम्नविजये प्रभावतीविवाहो नाम सप्तमोऽध्यायः ॥

---

हे जननी वाग्वती ! सम्पूर्ण देवताहरूले भक्तिपूर्वक समर्पण गरिएको कल्पवृक्षका फूलहरूको परागद्वारा रञ्जित जलपूर्ण मृगेन्द्रशिखर पर्वतको काखमा किं वा आफ्नो गर्भमा यी सूर्यकेतुकी छोरीलाई राख्नुहोस्, जसबाट कि त्यस महेन्द्रदमनले यिनीलाई हरण गर्न सक्ने छैन ॥२६–२७॥

श्रीवाग्वतीसँग यसरी बिन्ती गरी वाग्वतीको पवित्र जलमा नै ती सुन्दरीलाई नासो राखेर मीनकेतु श्रीप्रद्युम्न आफ्नो इच्छानुसार भ्रमण गर्ने विचित्र रथमा सवार भए । स्वच्छ स्फटिकमणिसमान नदीको जलले अत्यन्त सुषमामय देखिएकी, फूलको रसपानमा मग्न भुँभुँ गर्ने भ्रमरको कारण विकसित मुखमण्डलले सुहाएकी, खुब फुलेका फूलहरूले ढकमक्क भएकी पर्वतको बगैंचारूपी चोलो पैह्रेकी, अत्यन्त उत्तम सुन्दरी जस्ती रमणीय पृथ्वी माताको दर्शन गर्दै आफ्नो रथको सहाराले प्रस्थान गरिरहनु हुने रुक्मिणीनन्दन श्रीप्रद्युम्नले भने ॥२८–३१॥

हे सुमुखी प्रभावती ! अत्यन्त उच्च भागमा रहेको दानवहरूको अति उत्तम नगरी हेर, जहाँ मैले लडाईंमा कालशम्बरलाई मारेको थिएँ । हे नितम्बिनी ! यहीं भगवान् रुद्रले ब्रह्माको अभिमान गर्ने पाँचौं शिरलाई छेदन गर्नु भएको थियो । त्यस्तै हे सुवदने ! कुम्कुम केशरको खानी, सुन्दर र ज्यादै रमाइलो काश्मीरको सुन्दर दृश्यावलीलाई अवलोकन गर । यसरी आफ्नी प्रियतमालाई काश्मीर आदिको सौन्दर्य बताएपछि द्वारकानगरका नारीहरूका नयनभ्रमरपान गरिएको मुखकमलले सुहाउनुभएका र ती सबै सुन्दरीहरूलाई सम्मोहित गर्नुहुने जनार्दन कृष्णका प्यारा पुत्र प्रद्युम्न आफ्नो रमणीय नगरीमा प्रवेश गर्नुभयो ॥३२–३५॥

यसरी श्रीवाग्वतीप्रशंसामा प्रद्युम्नविजयखण्डमा प्रभावतीविवाह नाम भएको सातौं अध्याय सकियो ।

# अथ अष्टमोऽध्यायः

सुप्रभानगर्यां नारदस्य प्रवेशो महेन्द्रदमनस्य द्वारकायात्रा च

(सुप्रभानगरीमा नारदजीको प्रवेश एवं महेन्द्रदमनको द्वारकायात्रा)

पुलस्त्य उवाच

ततः प्रहृष्टहृदयः सुप्रभाभवनं शुभम्। प्रविवेशाऽसुरैः पूर्णं नारदो मुनिसत्तमः ॥१॥
प्रविश्याऽन्तस्तदा शीघ्रं ज्वलन्तमिव तेजसा। रत्नाभरणसम्भूतप्रभापल्लवितश्रियम् ॥२॥
चक्रचामरशङ्खाब्जश्रीवत्सकृतलक्षणम्। अलङ्कृतकराग्रेण शोभितं शुभकारिणम् ॥३॥
रक्तपद्मदलाताम्रज्वलल्लोलविलोचनम्। आवासमिवदर्प्पाणां भिन्नवैदूर्यसप्रभम् ॥४॥
अनेकासुरसङ्कीर्णसभालङ्कारसन्निभम्। माणिक्यशकलाकीर्णहिमासनवरस्थितम् ॥५॥
राज्यलीलासुखाम्भोधिनिमग्नवरविग्रहम्। ददर्श नारदो धीमान् राजानं शक्रतापनम् ॥६॥
ततो दत्तवराशीश्च पठद्वेदो महामुनिः। निषसादाऽऽसनवरे कल्पिते हेमनिर्मिते ॥७॥
कौतूहलपरो भूत्वा दृष्ट्वाऽऽयातं महामुनिम्। अब्रवीदीदृशं वाक्यं श्रीमानसुरसत्तमः ॥८॥
आयातं व्योममार्गेण मेरुशृङ्गाग्रसन्निभम्। तस्य मूर्ध्नि समाविष्टमिन्द्रनीलसमप्रभम् ॥९॥
तदग्रेण समायातं बालादित्यसमप्रभम्। चरद्भिरसुरैर्दृष्टं मम शासनवर्तिभिः ॥१०॥
अव्यक्तं नावगच्छामि किमिदं वै तपोनिधेः। ज्ञाता त्वमसि कार्याणां सर्वेषां मुनिसत्तमः ॥११॥
ततस्तस्य वचः श्रुत्वा दैत्येन्द्रस्य महात्मनः। व्याजहार शुभं वाक्यं नारदो मुनिपुङ्गवः ॥१२॥
यदि कौतूहलं राजन् विद्यते तव साम्प्रतम्। श्रावयिष्याम्यहं क्षिप्रं दृष्टं स्वेनैव चक्षुषा ॥१३॥
आयातो व्योममार्गेण वाग्वतीप्रभवं गिरिम्। मेरुशृङ्गाग्रसङ्काशो गरुत्मानिति विश्रुतः ॥१४॥
तस्य मूर्ध्नि समाविष्ट इन्द्रनीलसमप्रभः। यदुवंशपतिः श्रीमान् विष्णुरित्यभिधीयते ॥१५॥

---

पुलस्त्य भन्दछन् – प्रभावती र प्रद्युम्नको विवाह भै सकेपछि मुनिश्रेष्ठ श्रीनारदजी प्रसन्न चित्तभै सारा दैत्यहरूले खचिखचाउ भरिएको अत्यन्त सुन्दर सुप्रभाको भवनमा प्रवेश गर्नुभयो। शीघ्रतापूर्वक भित्र पसेर तेजले सुहाएको जाज्वल्यमान विभिन्न रत्नहरूका अलङ्कारबाट उत्पन्न चहकले वसन्तऋतुको पालुवा भैं सुहाएको, चक्र, चामर, शङ्ख, कमल, श्रबत्स आदि आभूषणद्वारा उपलक्षित केयूर कङ्कण र औंठी आदि मङ्गलमय गहनाहरूले देदीप्यमान भएको, रक्तकमल जस्तै रातो वर्ण भएको र अहिले नै बलिहाल्लान् कि भने जस्ता मूर्तिमान् अहङ्कार जस्तो र चहकिलो वैदूर्यमणिसमान तेजस्वी अनेकौ दैत्यहरूले भरिभराउ भएको सभाको अलङ्कारसमान मणि र माणिक्यका टुक्राहरू जडिएको उत्तम सुनको सिंहासनमा विराजमान भएको राज्यलीलारूपी आनन्दपारावारमा मग्न भै रहेको, सौन्दर्यमय शरीरले सुहाएको र इन्द्रलाई पनि भित्रभित्रै जलाउने महेन्द्रदमनलाई नारदले देखे ॥२-६॥

त्यसपछि दानवाधिपति श्रीइन्द्रदमनलाई वरदान तथा आशीर्वाद दिँदै गरेका र वेदमन्त्रको उच्चारण गरिरहेका मुनिराज श्रीनारदजी सुनैसुनले सजाइएको आसनमा बसे। महामुनि श्रीनारदजीलाई आउनुभएको देखेर निकै रुचिपूर्वक दानवाधिपति इन्द्रदमनले प्रश्न गरे – हे देवर्षि ! आकाशमार्गबाट आइरहेको सुमेरु पर्वतको चुचुराको टुप्पो जस्तै यो के हो ? यसको काँधमा रहेको इन्द्रनीलमणि जस्तै तेजस्वी देखिने यो को हो ? त्यसकै अगाडि अगाडि आइरहेको बालसूर्यसमान तेजस्वी को हो ? जसलाई मेरो आज्ञाद्वारा भ्रमण गरिरहेका असुरहरूले देखिरहेका छन्। यी सम्पूर्ण वस्तुहरू प्रकट नभएकाले मैले ठीक ठीक जान्न सकिनँ। हे मुनिराज ! तपाईंले सबै कुरा बताउनुहोस्। तपाईं सबै कार्यका ज्ञाता उत्तम मुनि हुनुहुन्छ ।महेन्द्रदमनले प्रश्न गरेपछि उदारहृदय भएको दैत्यराजको प्रार्थना सुनेर मुनिराज नारदले कल्याणमय वचन भन्न लागे ॥७-१२॥

श्रीनारद भन्दछन् – महाराज ! यदि तपाईंको इच्छा हुन्छ भने म छिटै नै आफ्नै आँखाले देखेको कुरा सुनाउँछु। आकाशमार्गबाट वाग्वतीको उद्‌गम गराउने पर्वतमा आउने व्यक्ति सुमेरुसमान अग्ला पक्षिराज गरुड हुन्। गरुडको काँधमाथि विराजमान हुने इन्द्रनीलमणिको जस्तै सुषमाले सम्पन्न पुरुष श्रीमान् यदुवंशका स्वामी योगेश्वर श्रीकृष्ण नै हुनुहुन्छ।।१३-१५॥

तदग्रेण समायातो बालादित्यसमप्रभः । रुक्मिणीतनयो वीरः प्रद्युम्न इति कीर्त्यते ॥१६॥
तीर्थयात्राप्रसङ्गेन प्रागतो रुक्मिणीसुतः । चकार हरणं देव्याः प्रभावत्या यदृच्छया ॥१७॥
तस्य तद्ववचनं श्रुत्वा महर्षेरमितौजसः । अब्रवीदीदृशं वाक्यं श्रीमानसुरसत्तमः ॥१८॥
मुनिना विदितः किन्तु प्रागतो विष्णुरित्ययम् । यदि जानाम्यहं व्यक्तं सपुत्रं न त्यजामि तम् ॥१९॥
इत्युक्तवति दैत्येन्द्रे विहस्याऽसुरसत्तमम् । नारदो भगवान् वाक्यमब्रवीदीदृशं पुनः ॥२०॥
नाधिक्षेपस्त्वया वाच्यो विष्णोरमिततेजसः । दंष्ट्रारत्नं महारत्नं विद्यते यस्य वेश्मनि ॥२१॥
पुरा महावराहस्य दंष्ट्रया निर्मितं सुरैः । कदाचित्तेन वै लब्धं रत्नं सूर्यसमप्रभम् ॥२२॥
दिवा रक्षितमर्केण रजन्याममृतांशुना । दिवानिशञ्च यत्नेन यादवैः परिरक्षितम् ॥२३॥
नवोदितार्कबिम्बाभं नित्यमेव सुपूजितम् । रत्नमस्ति महाबाहो कामदं लोकदुर्लभम् ॥२४॥
प्रभावात्तस्य रत्नस्य द्विगुणीभूतविक्रमम् । विष्णुं जेतुं महाबाहो कस्य शक्तिः प्रवर्तते ॥२५॥
हरणेन प्रभावत्याः शम्बरस्य वधेन च । यदि कोपोऽस्ति दैत्येन्द्र ह्रियतां रत्नमुत्तमम् ॥२६॥
तवैकस्यागतं गम्यमगम्यमपरैर्नृपैः । रत्नस्याहरणादन्यत् किमस्ति पृथिवीपते ॥२७॥
एवं सम्भाष्य दैत्येन्द्रं ज्वलत्कोपानलाकुलम् । निष्क्रम्य राजभवनान्निर्ययौ स महामुनिः ॥२८॥
गतेऽथ नारदे राजा रत्नाहरणहेतुना । राहुमादिश्य चन्द्रस्य ग्रहणं स प्रतीक्षते ॥२९॥
एकदा तु दिने रम्ये दृष्ट्वा सङ्केतमात्मनः । ज्वलदाताम्रनयनो भ्रुकुटीकुटिलालकः ॥३०॥
सन्नद्धो बद्धकवचः खड्गपाणिर्धनुर्धरः । सिंहस्कन्धो महोरस्को बलशौर्यसमन्वितः ॥३१॥
वायुवेगं समास्थाय सोऽसुरः क्रोधमूर्च्छितः । जगाम द्वारकां रम्यां रत्नाहरणहेतुना ॥३२॥
त्वरेणाऽऽसाद्य तं देशं रत्नाहरणलालसः । हरणोपायमालोक्य तस्थावसुरसत्तमः ॥३३॥

---

आफ्ना पिता भगवान् श्रीकृष्णको अघि अघि आउने बालसूर्यसमान तेजिला रुक्मिणीपुत्र वीर प्रद्युम्न हुन् । तीर्थयात्राको प्रसङ्गमा आएका रुक्मिणीपुत्र प्रद्युम्नले आफ्नै इच्छाले प्रभावती देवीको हरण गरे । अत्यन्त तेजस्वी श्रीमहर्षि नारदको वचन सुनेर ऐश्वर्यशाली दानवराज महेन्द्रदमन भन्न लागे – नारदजीले भन्नुभएपछि मात्र मैले विष्णु आएको थाहा पाएँ । यदि मैले स्पष्ट रूपमा थाह पाएको भए छोरासहित विष्णुलाई छाड्ने थिइनँ ॥१६–१९॥

दैत्यपति महेन्द्रदमनले यति भनेपछि भगवान् नारदजीले हाँसेर इन्द्रदमनलाई भन्नुभयो – हे राजा इन्द्रदमन ! पराक्रमको लेखाजोखा नभएका भगवान् विष्णुलाई आक्षेप नलगाउनुहोस्, उहाँको दरबारमा दंष्ट्ररत्न भनिने महारत्न रहेको छ । पहिले वराहकल्पमा देवताहरूले महावराहको दाँतद्वारा बनाइएको यो सूर्यसमान कान्ति भएको रत्न एकपल्ट भगवान् कृष्णले प्राप्त गर्नुभएको हो ॥२०–२२॥

दिनमा भगवान् सूर्यले त्यस द्रष्ट्ररत्नको रक्षा दिनमा र रातमा चन्द्रमाले गर्नुहुन्छ । यस्तै अहोरात्र यादवहरू बडो प्रयत्नका साथ त्यस रत्नको रक्षा गर्दछन् । हे महाबाहु ! सँधैभरि जसको पूजा हुन्छ, त्यस नयाँ उदाएको सूर्यबिम्बसमान रत्नले सम्पूर्ण इच्छा पूर्ण गराउँछ । त्यसैले त्यो रत्न लोकमा दुर्लभ मानिएको छ । हे महाबाहु ! त्यस रत्नका प्रभावले दुईगुना पराक्रम भएका श्रीविष्णुलाई जित्ने शक्ति कसैको पनि छैन । हे दैत्यराज ! प्रभावतीको हरण र शम्बरासुरको वधका कारण यदि तपाईंको भित्री मनमा रीस उठेको छ भने त्यस उत्तम रत्नलाई हरण गर्नुहोस् । हे महाराज ! एकमात्र हजुर यस कामलाई पूर्ण तुल्याउन समर्थ हुनुहुन्छ, अरू राजाहरू समर्थ छैनन् । रत्नप्राप्तिभन्दा उत्तम काम अरू कुन छ ? ॥२३–२७॥

यसरी खुलस्त कुरा बताएर दैत्यराज महेन्द्रदमनलाई क्रोधाग्निद्वारा जाज्वल्यमान तुल्याई महामुनि नारदजी राजभवनबाट बाहिर गए । नारदजी दरबारबाट बिदा भई बाहिर गएपछि दानवेश्वर महेन्द्रदमनले राहुलाई चन्द्रग्रहणका निम्ति अह्राएर मौका पर्खिरहे ॥२८–२९॥

एकदिन शुभमुहूर्तमा प्रभावतीहरणजस्तो अपमानजनक घटना याद गरेर रीसले भर्खरै बलिहाल्लान् कि जस्ता र तातेको तावासमान राता राता आँखा भएका,बाङ्गो आँखिभौंले गर्दा मुखै बाङ्गो जस्तो देखिने दैत्येश्वर महेन्द्रदमन युद्धका लागि तयार भए । शरीरमा कवच धारण गरी हातमा खड्ग र धनु लिएर सिंहको जस्तै काँध, विशाल छाती, शारीरिक बल, मानसिक शूरता र वीरताले सम्पन्न भएका दानवेन्द्र क्रोधले चूर भई वायुको वेग गरेर रत्न अपहरण गर्नका निम्ति अत्यन्त सुन्दर श्रीद्वारावती नगरीतर्फ प्रस्थान गरे । चाँडोभन्दा चाँडो द्वारवती नगरीमा पुगी रत्नहरण गर्न चाहने दैत्यराज महेन्द्रदमन मौका पर्खिरहेका थिए ॥३०–३३॥

यसरी श्रीवाग्वतीप्रशंसामा श्रीप्रद्युम्नजीको दिग्विजयको सिलसिलामा रत्नहरण नामक आठौं अध्याय पूरा भयो ॥

# अथ नवमोऽध्यायः

श्रीकृष्णप्रद्युम्नयोर्नेपालयात्रा (श्रीकृष्ण प्रद्युम्नको नेपालयात्रा)

पुलस्त्य उवाच

ततो मुमोच शशिनं स्वग्रस्तं सिंहिकात्मजः । जगाम रजनी चैव क्षयं चन्द्रांशुना सह ॥१॥
निद्रासुखविनिर्मुक्ता बभूवुः पुरवासिनः । रराज भगवान् सूर्यः कमलोत्पलहासनः ॥२॥
ततः प्रभातसमये भगवान् मधुसूदनः । द्रंष्ट्रारत्नस्य पूजार्थं प्रविवेश तदालयम् ॥३॥
प्रवेशाऽनन्तरं शीघ्रं विनिष्क्रम्य तदालयात् । पप्रच्छ स महाबाहुस्तत्रस्थान् रत्नपालकान् ॥४॥

श्रीकृष्ण उवाच

भो रत्न पालका यूयं क्व गतं रत्नमुत्तमम् । वाक्यं भगवतः श्रुत्वा प्रणम्याऽञ्जलिकारिणः ॥५॥
ईदृशं वचनं प्राहुस्तत्रस्था रत्नपालकाः । एकेनाऽऽगत्य शर्वर्यां प्रगाढायां चतुर्भुज ॥६॥
प्रविष्टं तव पुत्रेण प्रद्युम्नेन तदालये । एवमुक्तवतां तेषां श्रुत्वा वाक्यमसंशयम् ॥७॥
प्रद्युम्नं त्वरयाऽऽहूय पप्रच्छ भगवान् हरिः । हृतं तद्रत्नकं पुत्र त्वयाऽऽज्ञा मम नास्ति हि ॥८॥
रात्रौ विशेषतोऽस्माकं प्रयच्छस्व तु तत् पुनः । न मया विधृतं तात रत्नजातं कदापि च ॥९॥
सत्यमेतन्मया व्यक्तं भवदग्रे निगद्यते । पुत्रस्य वचनं श्रुत्वा पृच्छ्यमानस्य यत्नतः ॥१०॥
मुहूर्तं ध्यानमास्थाय भगवानिदमब्रवीत् । जानामि वीर हे पुत्र दुष्टं रत्नापहारिणम् ॥११॥
रूपं तव समास्थाय हृतं देवेन्द्रशत्रुणा । हत्वा दैत्यं दुरात्मानं द्रंष्ट्रारत्नापहारिणम् ॥१२॥
पूरणीयस्त्वया पुत्र देवेन्द्रस्य मनोरथः । गन्तव्यमस्माद् हे पुत्र जयार्थेनाऽऽत्मनस्त्वया ॥१३॥
वधूं प्रभावतीञ्चैव नेष्यसि प्रियकाङ्क्षिणीम् । अहमप्यागमिष्यामि सन्द्रष्टुं निधनं रिपोः ॥१४॥
गङ्गादर्शनकाङ्क्षिण्या वाग्वत्याश्च प्रमोक्षणात् । तवैव हि जयो नित्यं देवराजोऽपि वाञ्छति ॥१५॥
पूजार्थं त्रिदशैः सार्धं स च व्यक्तं समेष्यति । इत्युक्त्वा भगवान् विष्णुर्देवकार्य हिते रतः ॥१६॥
विस्मयोत्फुल्लनयनं पार्श्वस्थं मुनिमब्रवीत् ॥१७॥

---

पुलस्त्य भन्नुहुन्छ – त्यसपछि सिंहिका दानवीको पुत्र राहुले आफूले ग्रस्त बनाएको चन्द्रमालाई छोडिदिए र चन्द्रमाको कान्तिका साथसाथै रात पनि समाप्त भयो । रात बितेपछि द्वारवती शहरका सम्पूर्ण प्रजाहरू पनि निद्राबाट मुक्त भए । उता कमलहरूलाई हँसाउने सूर्य भगवान् पनि आफ्नो प्रकाश फैलाउँदै उदाए । भगवान् श्रीसूर्यको उदय भैसकेपछि प्रातःकालमा भगवान् मधुसूदन दंष्ट्ररत्नको पूजा गर्न त्यस भवनमा प्रवेश गर्नुभयो । पस्नेबित्तिकै छिटै नै त्यस कोठाबाट बाहिर आएर महाबाहु भगवान् श्रीकृष्णले त्यहाँ बसेका पहरेदारहरूलाई सोध्नुभयो ॥१-४॥

भगवान्ले भन्नुभयो – हे रत्नरक्षकहरू हो ! त्यो सर्वोत्तम रत्न कहाँ गयो ? यस किसिमको भगवान्को वाक्य सुनी प्रणाम गरेर अञ्जलि जोडी विनम्र भएर त्यहाँका पाले पहरादारहरू भन्न थाले – हे चतुर्भुज ! गाढ अन्धकारमय रात्रिमा हजुरको सुपुत्र प्रद्युम्न एक्लै आई यो रत्नको ढुकुटीमा पस्नुभएको थियो। यस्तो ती रत्न संरक्षक सिपाहीहरूको निःशंक वाक्य सुनेर तुरुन्तातुरुन्त नै प्रद्युम्नलाई बोलाएर श्रीकृष्णले सोध्नुभयो – हे पुत्र प्रद्युम्न ! तिमीले त्यो मेरो अमूल्य रत्न अपहरण गरेर लगेछौ । बाबु मेरो आज्ञाविना किन तिमीबाट यस्तो अनुचित कार्य हुन गयो? विशेष गरी रातका समयमा मेरो यस रत्नागारमा कसैलाई आउने आज्ञा नै छैन । यस कारण तिमीले मेरो रत्न फिर्ता गरिदेऊ ॥५-९॥

आफ्ना पूज्यपिता भगवान् श्रीकृष्णको वचन सुनिसकेपछि प्रद्युम्नले भन्नुभयो – मैले कहिल्यै पनि रत्नहरण गरेको छैन । छोरा प्रद्युम्नको यो उत्तर सुनेर एकक्षणसम्म ध्यान दृष्टिले सोचेर भगवान्ले भन्नुभयो – हे वीरशिरोमणि प्रद्युम्न ! हाम्रो यो अनमोल रत्न हरण गर्ने दुष्टलाई अहिले मैले चिनें । बाबु प्रद्युम्न ! तिम्रो नै रूप धारण गरी इन्द्रदमनले रत्न चोरेको बुझियो। तसर्थ हे बाबु ! दंष्ट्ररत्नको अपहरण गर्ने दुष्ट दैत्यलाई नाश गरी तिमीले इन्द्रको समेत इच्छालाई पूर्ण गर्नुपर्ने छ । त्यसैले हे बाबु ! अब तिमी यथाशीघ्र नै शत्रुविजयका लागि प्रयाण गरिहाल । सँधैभरि आफ्नो प्रियतमका साथ सहवास चाहने बुहारी प्रभावतीलाई पनि साथमै लिएर जाऊ । त्यसपछि शत्रुको विनाश हेर्नका लागि म पनि त्यहीं नै आइपुग्नेछु । गङ्गासँगको दर्शन र स्पर्शनबाट एकाकार बन्न चाहने वाग्वती नदीलाई बन्धन मुक्त गर्नका लागि इन्द्र तिम्रो विजय चाहन्छन् । हे बाबु प्रद्युम्न ! सम्पूर्ण देवताहरूलाई साथ लिई श्रीइन्द्र अवश्य नै तिम्रो स्वागत, सत्कार, मान र पूजाका लागि आउनेछन् । यति कुरा आफ्ना पुत्र प्रद्युम्नलाई बताएर देवताहरूको उद्धार कार्यमा तत्पर भगवान् श्रीकृष्णले अद्‌भुत संवाद सुनी चकित भैरहेका नजिकै बस्ने मुनिलाई भन्नुभयो ॥१०-१७॥

श्रीकृष्ण उवाच

सर्वं मद्वचनं ब्रूहि सहस्राक्षं महामुने। दैत्येन्द्रनिधनं द्रष्टुमायातव्यमिति स्वयम् ॥१८॥
तस्य वाक्यावसाने तु पितुर्मकरकेतनः। प्रणम्यशिरसा पादावारुरोह रथोत्तमम् ॥१९॥
ततो रथवरारूढः खड्गबाणधनुर्धरः। पठद्वेदैर्द्विजैः शीघ्रं जयाशीभिः प्रपूजितः ॥२०॥
प्रयातो रथवर्येण कामगेन यदृच्छया। प्रहृष्टः पीवरोरस्कः प्रियालिङ्गनलालितः ॥२१॥
विलोक्य धरणीं रम्यां सरिच्छतविभूषिताम्। प्रद्युम्नो रूपिणां श्रेष्ठ इदं वचनमब्रवीत् ॥२२॥
वितस्ता देविका सिन्धुः शतद्रुः सरिदुत्तमा। एताः पश्यतु सुश्रोणि पृथिव्या हारसन्निभाः। २३॥
कुरुक्षेत्रस्य मध्येन गच्छन्ती पश्चिमोदधिम्। एषा सरस्वती रम्या पुण्यतीर्थशतानुगा ॥२४॥
एषा विलोक्यतां देवि पावनी पृथिवीतले। ग्रथितोत्पलमालेव भ्राजन्ती यमुना नदी ॥२५॥
सोममण्डलसम्भूता निर्मलांशुकसन्निभा। एषा सन्दृश्यते भद्रे गङ्गा त्रैलोक्यपावनी ॥२६॥
उपस्पृष्टजला पुण्या नैमिषारण्यवासिभिः। रम्या दृषद्वती चापि गोमती चापि दृश्यते।२७॥
एषा सन्दृश्यते देवि सरयू लोकपावनी। यामाश्रित्य दिवं यातो रामो दशरथात्मजः ॥२८॥
गौरीगण्डस्थलोद्भूता कालाभ्रम्यरसोपमा। एषा विभाति सुश्रोणि गण्डकी सरिदुत्तमा ॥२९॥
शैलमालानिरुद्धाङ्गी ह्रदीभूता मनोरमा। एषा सन्दृश्यते देवि वाग्वती लोकपावनी ॥३०॥
भवत्याऽध्यासितः पूर्वं गौर्याराधनहेतुना। प्रणम्यतां त्वया भद्रे मृगेन्द्रशिखरो गिरिः ॥३१॥
इत्युक्त्वा रथमुत्सृज्य प्रद्युम्नो रूपिणां वरः। प्रविवेश सरः पुण्यं वाग्वतीजलपूरितम् ॥३२॥
ततः सरस्युन्मदहंससारसे विहृत्य कामः कुसुमौघशोभिते। गिरौ मनोज्ञे निषसाद कैशविः प्रभावतीविभ्रमवीक्षिताननः ॥३३॥

इति श्रीवाग्वतीप्रशंसायां प्रद्युम्नविजये उद्योगवर्णनं नाम नवमोऽध्यायः।

---

श्रीकृष्ण भगवान् भन्नुहुन्छ – हे महामुनि ब्राह्मणदेव ! मेरो यो सम्पूर्ण समाचार इन्द्रसँग गई बताएर दैत्येन्द्रको विनाश हेर्नका लागि तपाईं आफैं आउनुपर्दछ भन्नुहोस् ॥१८॥

पिता श्रीकृष्णको यति आज्ञा सुनिसकेपछि कामदेवका साक्षात् अंश प्रद्युम्न आफ्ना पिताको चरणमा शिरले प्रणाम गरी दैत्येन्द्रमाथि विजय गर्न भनी उत्तम रथमा सवार हुनुभयो। त्यसपछि छिटै नै श्रेष्ठ रथमा विराजमान हुनुभएका प्रद्युम्न हातमा खड्ग,बाण र धनुलिई वेद पाठ गरिरहेका ब्राह्मणहरूको आशीर्वादपूर्वकको स्वस्तिवाचनद्वारा विशेष सम्मानित हुनुभयो। रथीको इच्छानुकूल चल्ने रथमा सवार भई हृष्टपुष्ट शरीर, ठूलो छाती सुकाएका र प्रियतमाको आलिङ्गनका कारण रमणीय देखिने प्रद्युम्नको यात्रा गर्नुभयो। सयौं सुन्दर नदीहरूद्वारा अत्यन्त रमणीय बनेकी पृथ्वीमातालाई हेर्दै प्रद्युम्नले आफ्नो मनोभावना यसरी व्यक्त गर्नुभयो ॥१९-२२॥

हे सुन्दरमुखी ! प्रभावती ! हेर त यी पृथ्वीमाताका कण्ठका सुन्दर हारजस्ता वितस्ता, देविका, सिन्धु, शतद्रु आदि उत्तम नदी तल पृथिवीमा देखिएका छन्, तिमी यिनलाई हेर। कुरुक्षेत्रको माझबाट पश्चिम समुद्रतिर गइरहेकी बीच बीचमा सयौं पुण्यतीर्थले सुहाएकी सरस्वती नदीलाई हेर। हे देवी प्रभावती ! तिमीले पृथ्वीतलमा नीलकमलहरूद्वारा गुम्फित माला झैं सुहाएकी लोकपावनी यमुना नदीलाई हेर। हे कल्याणी प्रभावती ! चन्द्रमण्डलबाट उत्पन्न भएकी निर्मल, सफा दुपट्टाजस्तो सेतो वर्ण भएकी तीनै लोकलाई पवित्र तुल्याउने गङ्गाजी देखिएकी छिन्, यिनलाई तिमीले हेर। नैमिषारण्यनिवासीहरूद्वारा आचमन गरिएकी पवित्र एवं अत्यन्त रमणीय दृषद्वती र गोमती नदीहरू पनि देखिएका छन् ॥२३-२७॥

हे देवी प्रभावती ! यस्तै लोकपावनी सरयू नदी पनि देखिएकी छिन्, जसको आश्रय लिई दशरथनन्दन श्री रामले स्वर्गमार्गतिर प्रस्थान गर्नुभएको थियो। हे प्रभावती !श्रीगौरीजीको गण्डस्थलबाट उत्पन्न भएकी र कालो गाजलकै रस जस्तो झट्ट देखिने उत्तम नदी गण्डकी सुहाएकी छिन्। यिनको दर्शन गर। शैलसमूहले रोकिएर सुन्दर सरोवरजस्तो बनेकी लोकपावनी वाग्वती नदी पनि देखिइन। तिमीले दर्शन गर। हे कल्याणी प्रभावती ! गौरीजीको आराधना गर्ने कल्याणकार्यमा जुटेर तिमी पहिले जहाँ बसेकी थियौ, त्यस मृगेन्द्रशिखर पर्वतलाई पनि प्रणाम गर। यसरी आफ्नी प्रियतमा प्रभावतीलाई बताएर रथबाट ओर्ली प्रद्युम्न वाग्वतीको जलले परिपूर्ण पवित्र सरोवरमा प्रवेश गरे। त्यसपछि अनेक प्रकारका कमल, चन्द्रकमल र अरू नाना प्रकारका फूलहरूले सुशोभित भएको, मदले उन्मत्त कलहंस, सारस आदि पक्षीहरू र अरू जलचरद्वारा पनि सुन्दर आनन्दप्रद शब्द गरिएको वाग्वतीसरोवर नेपाल उपत्यकामा विहार गरी प्रियतमा प्रभावतीद्वारा विलासविभ्रमले हेरिएको सुन्दर मुखकमलले सुहाएका श्रीकृष्णपुत्र प्रद्युम्न सुन्दर पर्वतमा गई विराजमान भए ॥२८-३३॥

यसरी श्रीवाग्वतीजीको प्रशंसाको उपक्रममा प्रद्युम्नविजयकाण्डमा उद्योगवर्णन नामको नवौं अध्याय सकियो ॥

# अथ दशमोऽध्यायः

पुलस्त्य उवाच

अथ पङ्कजकिञ्जल्ककपिलीकृतविग्रहम्। शरदातपसम्पर्कजातश्रमविवर्जितम् ॥१॥
गिरेर्मनोरमे मूर्ध्नि निषण्णं मकरध्वजम्। सा विग्रहवती भूत्वा वाग्वती वाक्यमब्रवीत् ॥२॥
ज्ञात्वा चन्द्रावतीं देवीं मद्धस्ते प्रतिपादिताम्। क्रुध्यते शक्रदमनो ज्वलत्कोपानलाकुलः ॥३॥
अतस्तस्य भयत्रस्तः सूर्यकेतुर्नराधिपः। मन्त्रजापेन घोरेण ध्यायते हि जयं तव ॥४॥
युद्धेऽपमानितस्तेन दैत्येन्द्रेण दुरात्मना। तवैव हि जयं नित्यं ध्यायते त्रिदशाधिपः ॥५॥
दीर्घकालं निरुद्धाङ्ग्या विराधाङ्गरुजार्तया। मयाऽपि सततं वीर ध्यायते विजयस्तव ॥६॥
भगिन्या हरणे नूनमागतं परिशङ्कितम्। शरचापौ समुद्यम्य चन्द्रकेतुः प्रतीक्षते ॥७॥
तस्यास्तद्वचनं श्रुत्वा वाग्वत्या वलिनां वरः। प्रद्युम्नो रुक्मिणीसूनुरिदं वचनमब्रवीत् ॥८॥
दंष्ट्रारत्नापहरणं यः करोति सुदुष्करम्। हरणे चन्द्रवत्याश्च येन बुद्धिर्निवेशिता ॥९॥
भविष्यति वधस्तस्य निश्चयान्मम बाहुना। तथापि द्रष्टुमिच्छामि रिपो रूपं दुरात्मनः ॥१०॥
तस्य तद्वचनं श्रुत्वा प्रमोदोद्धतमानसा। सा विग्रहवती देवी वाग्वती वाक्यमब्रवीत् ॥११॥
इहैष्यति महाबाहो निश्चयं शक्रतापनः। द्रष्टुं चन्द्रावतीं मोहात् कृतकौतूहलाकुलः ॥१२॥
ततस्तस्मिन् क्षणे पुण्ये विरहातुरमानसः। निर्ययौ स्वबिलाद्रम्यान्महेन्द्रदमनो नृपः ॥१३॥
दैत्येन्द्रमागतं दृष्ट्वा विरहातरमानसम्। कृत्वा चन्द्रावतीरूपं तस्थौ मकरकेतनः ॥१४॥
ततः प्रभावती देवी समुत्थाय ससम्भ्रमा। विनयेनाऽञ्जलिं कृत्वा दैत्येन्द्रमिदमब्रवीत् ॥१५॥
सखी चन्द्रावती देवी त्वद्गुणौघविमोहिता। प्रणामङ्कुरुते नाथ लज्जया व्यथितेन्द्रिया ॥१६॥
ततोऽभ्रचापनिर्मुक्तैरपाङ्गेष्वभिरुच्चकैः। विभेद हृदयं तस्य प्रद्युम्नः कामरूपधृक् ॥१७॥

---

पुलस्त्य भन्दछन् - यसपछि कमलहरूको केशरले कैलो भएको शरीर धारण गर्ने र शरद् ऋतुको सम्पर्कबाट परिश्रमरहित भै पर्वतको सुन्दर टाकुरामा बस्ने प्रद्युम्नसँग शरीरधारिणी वाग्वतीजीले भनिन् - हे वीरशिरोमणि प्रद्युम्न ! हेर्नुहोस्, श्री चन्द्रावती देवीलाई मेरो हातमा सुम्पिएको थाहा पाई जाज्वल्यमान क्रोधाग्निले आकुल व्याकुल भएको महेन्द्रदमन मसँग रिसाएको छ। यसकारण यस महेन्द्रदमनको डरले आत्तिएका राजा सूर्यकेतु अघोर मन्त्रको जप गर्दै तपाईंको जय चिताइरहेका छन्। दुरात्मा त्यस दैत्यसँग युद्धमा अपमानित भएका इन्द्र पनि सधैं नै तपाईंको जय चाहन्छन् ॥१-५॥

धेरै अघिदेखि अङ्ग-भङ्ग भएकी र विराध राक्षसको अङ्गघर्षणको रोगले आत्तिएकी म पनि वीरवर तपाईंको विजय चिताइरहेकी छु। यस्तै राजा चन्द्रकेतु पनि बहिनीको हरणका लागि आएको महेन्द्रदमनदेखि सशङ्कित भई हातमा धानुर्बाण धारण गरी पर्खिरहेका छन्। मूर्तिमती श्री वाग्वती जीको माथिको वचन सुनेर बलवान्हरूमा श्रेष्ठ रुक्मिणीपुत्र श्री प्रद्युम्न भन्न लागे- जसले अत्यन्त मूल्यवान् दंष्ट्ररत्नलाई अपहरण गर्नेजस्तो दुष्कर कार्य गरेको छ, फेरि जसले चन्द्रावतीको अपहरणमा पनि दृष्टि दिइरहेको छ, त्यसको मृत्यु निश्चय नै मेरो हातबाट हुनेछ, त्यसो भएता पनि म एकपटक दुष्यत्मा त्यस शत्रुको अनुहार हेर्न चाहन्छु ॥६-१०॥

प्रद्युम्नको त्यो वचन सुनिसकेपछि आनन्दले प्रफुल्ल चित्त भएकी शरीरधारिणी देवी वाग्वतीले भनिन् । हे महाबाहु प्रद्युम्न ! सम्मोहबाट उत्पन्न कौतुकले आकुलव्याकुल भएका दानव महेन्द्रदमन चन्द्रावतीको दर्शनका निम्ति अवश्य यहीं आउने छन्। प्रद्युम्न र मूर्तिमती वाग्वतीको संवाद भइसकेपछि पुण्यप्रद मुहूर्तमा विरहकातर चित्त लिएर दानवेन्द्र महेन्द्रदमन आफ्नो गुफाबाट निक्लिए। यसरी विरहकातर महेन्द्रदमन आएको देखी प्रद्युम्न चन्द्रावतीको रूप लिई बसिरहे ॥११-१४॥

दानवाधिपति महेन्द्रदमन त्यहाँ आइपुग्ने बित्तिकै प्रद्युम्नकी सहधर्मचारिणी प्रभावती झट्पट् उठिन् र बडो नम्रतापूर्वक हात जोडी महेन्द्रदमनसँग भन्न लागिन् - हे महाराज ! मेरी सखी चन्द्रावतीदेवी हजुरका गुणहरूबाट मोहित भई लज्जाले इन्द्रियमा पीडा अनुभव गर्दै हजुरलाई प्रणाम गर्दछिन्। यति भन्दाभन्दै नै कामदेवका साक्षात् विभूति प्रद्युम्नले भृकुटीरूपी धनुबाट छोडिएको अपाङ्गरूपी बाणहरूद्वारा त्यस दैत्येन्द्रको हृदयरूपी लक्ष्यलाई भेदन नै गरिदिए ॥१५-१७॥

दृष्ट्वा चन्द्रावतीं देवीं सानुरागानुवर्त्तिनीम्। प्रफुल्लनयनां राजा चेदृशं वाक्यमब्रवीत् ॥१८॥
पतिं मां प्राप्य सुश्रोणि त्रैलोक्याधिपतिं प्रभुम्। भोक्ष्यसे विपुलान् भोगान् त्वं हि मर्त्येषु दुर्लभान् ॥१९॥
एह्येह्युत्पलपत्राक्षि क्रीडार्थं बहुभिर्गुणैः। सुप्रभाभवनं रम्यं गन्तव्यं स्वर्गसन्निभम् ॥२०॥
मम कान्ताशतं श्रुत्वा भीता माभूर्वराङ्गने। त्वां विमुच्य नचाऽन्यासां मुखं पश्यामि सुन्दरि ॥२१॥
इत्युक्तवति दैत्येन्द्रे कन्यारूपी स कैशविः। अब्रवीदीदृशं वाक्यं सान्तर्हासः स्मिताननः ॥२२॥
त्वद्वाक्यमीदृशं पुण्यं यदि सत्यं नराधिप। कथं नेच्छामि पत्नीत्वं राजभोगं च शाश्वतम् ॥२३॥
वर्तते हृदयं नूनं सततं त्वयि भूपते। तथापि नैतुमिच्छामि बलाद् बलवतां वर ॥२४॥
विधिनेह समागत्य ममाऽर्थेन समादरात्। प्रार्थनीयो महाबाहो पिता मे तपसां निधिः ॥२५॥
स्यास्तद्वचनं श्रुत्वा विस्मयोत्फुल्ललोचनः। मनोमोहपरो राजा भगिनीमिदमब्रवीत् ॥२६॥
यथा नाऽन्यत्र हृदयं चन्द्रावत्याः प्रजायते। तथा विधीयतां कन्ये निशामेकां प्रयत्नतः ॥२७॥
श्वः समागत्य विधिना सम्प्रार्थ्य पितरं स्वयम्। वरयिष्यामि सुश्रोणि विवाहे वरसुन्दरीम् ॥२८॥
इत्युक्त्वा स्वगतं धैर्यमवलम्ब्य महासुरः। निर्ययौ स्वविलं रम्यं रत्नरश्मिप्रदीपितम् ॥२९॥
गतमिन्द्ररिपुं दृष्ट्वा प्रद्युम्ने विगतज्वरे। ययौ सन्ध्याख्यया सार्धं रन्तुमस्ताचलं रविः ॥३०॥
विहाय धरणीं तापश्चक्रवाकमनो ययौ। कमलात्कुमुदं रम्यं निर्ययावलिसंहतिः ॥३१॥
बभूव कुङ्कुमाताम्रं वारुणीगगनस्थलम्। रुरोध जगदालोकं तिमिरञ्च तदा शनैः ॥३२॥
बभूवुर्निद्रया ग्रस्ताः प्राणिनोऽद्रिनिवासिनः। रराज भगवांश्चन्द्रः प्रदीप्तधरणीधरः ॥३३॥

---

नक्कली प्रेमद्वारा प्रफुल्ल भएका नयनले सुहाएकी कृत्रिम चन्द्रावतीलाई प्रेमपूर्वक पछि लागेको देखेर राजा महेन्द्रदमनले भन्न लागे – हे सुन्दरमुखी चन्द्रावती ! तीनै लोकको स्वामी, सर्वकर्मसमर्थ मलाई पतिका रूपमा पाई तिमीले मर्त्यलोकमा दुर्लभ भोगहरू भोग्न पाउनेछौ। हे कमलका पातझैं फराकिलो आँखा भएकी चन्द्रावती ! मेरो सुप्रभाभवन स्वर्गजस्तै अत्यन्त राम्रो छ। त्यहीं क्रीडा गर्न जाऔं। हे सुन्दरी ! मेरा अरू सयौं स्त्रीहरू छन् भन्ने कुरा सुनेर तिमीले डराउनु पर्दैन। हे सुन्दरी ! मैले तिमीलाई छाडी अरू कसैको मुख हेर्नेछैन ॥१८–२१।

हे भीष्मजी ! दैत्येन्द्र महेन्द्रदमनले यति भनिसकेपछि कन्याका रूपमा रहेका प्रद्युम्न मनमनै हाँस्तै प्रसन्न मुखले भन्न लागे। हे महाराज ! हजुरको यो पुण्यवचन यदि सत्य नै हो भने हजुरकी पत्नी हुन र नित्य राजभोग भोग्न मलाई किन रहर नहोला ?॥२३॥ हे महाराज !मेरो हृदय त हजुरमा गढेकै छ, यसो भएता पनि बलपूर्वक कसैले लैजान चाहन्छ भने मेरो स्वीकृति हुनेछैन ॥२४॥ हे महाबाहु दानवाधिपति ! मलाई पाउनका निम्ति आदरपूर्वक विधिपूर्वक यहीं नै आई तपोनिधि मेरा पिताजीसँग कुराकानी गर्नुपर्दछ ॥२२–२५॥

चन्द्रावतीको रूप धारण गर्ने प्रच्छन्न प्रद्युम्नको त्यो भनाइ सुनेर आश्चर्यले प्रफुल्ल नयन भएका महेन्द्रदमनले मोहित भएर आफ्नी बहिनी प्रभावतीसँग भने – हे मेरी मायालु बहिनी ! चन्द्रावतीको मन जसरी अन्त जाँदैन, त्यो उपाय एक रातका लागि तिमीले गर। हे सुन्दरमुखी प्रभावती ! भोलि आफैं गएर विधिपूर्वक यिनका पिताजीसँग प्रार्थना गरी सर्वोत्तम सुन्दरी चन्द्रावतीलाई विवाहमा वरण गर्नेछु। यति कुरा आफ्नी बहिनीलाई अह्राएर महेन्द्रदमन धैर्य लिएर रत्नैरत्नहरूको कान्तिले जाज्वल्यमान एवं अत्यन्त सुन्दर आफ्नो गुफामा प्रवेश गरे ॥२६–२९॥

इन्द्रको शत्रुलाई यसरी गएको देखेर प्रद्युम्नजी सन्तापरहित हुनुभयो। अर्कोतर्फ श्रीसूर्यनारायण पनि सन्ध्याका साथ रमण गर्न अस्ताचल पर्वततिर गए। दुःख भन्ने तत्वले अरू संसारबाट बिदा लिई चखेवा पक्षीको मनमा वास गर्दा यस्तै भमराहरू पनि खुम्चिएका कमलहरूलाई छोडी फुलेको राम्रो चन्द्रकमलतिर गए। पश्चिमतर्फको आकाश पनि कुंकुमजस्तै रातो वर्णको भयो। त्यसपछि विस्तारै विस्तारै अन्धकारले संसारको आलोकलाई छेकिदियो। त्यस पर्वतमा बस्ने सम्पूर्ण प्राणीहरू निदाए। धरणीतल तथा धरणीधर(पर्वतहरू)लाई चहकिला तुल्याउँदै चन्द्रमा विराजमान भए ॥३०–३३॥

तततोऽङ्कमध्यमारोप्य राजपुत्रीं प्रभावतीम्। प्रद्युम्नो रूपिणां श्रेष्ठ इदं वचनमब्रवीत् ॥३४॥
कान्तिमान् नयनानन्दजननो मतिमोहनः। प्रयाति पश्य पूर्णेन्दुस्त्वद्वक्त्रस्योपमां प्रिये ॥३५॥
सङ्कुचत्पत्रनिकरं विहाय कमलोत्पलम्। प्रयाति मधुलिण्माला विकसत्कुमुदोदरम् ॥३६॥
भृङ्गराजभारभग्नकेशरं कुमुदं प्रिये। पीताधरमिवाभाति रत्यन्ते कामिनीमुखम् ॥३७॥
मन्दमारुतविक्षेपैः प्रचलद्भिः सुकोमलैः। पल्लवाञ्जलिभिः पुष्पं क्षिपन्ति तरवः प्रिये ॥३८॥
भ्रूलतानृत्यललितमुद्यानमिव ते मुखम्। स्मितपुष्पोद्गमोपेतं रुचिराधरपल्लवम् ॥३९॥
इत्युक्त्वा प्रियवाक्येन प्रियाप्रेमप्रवर्तकः। रराम रुक्मिणीसूनू रम्ये गिरिवरे तदा ॥४०॥
ततः स्फुरत्पद्मपरागपिञ्जरा तरङ्गमाला रुचिरांशुकावृता।
प्रभावती हंसकलप्रलापिनी सरोरुहिण्या उपमानतां ययौ ॥४१॥

इति श्रीवाग्वतीप्रशंसायां प्रद्युम्नविजये प्रभावतीविनोदनं नाम दशमोऽध्यायः।

---

ठीक यसै समयमा राजकुमारी प्रभावतीलाई काखमा राखी अत्यन्त रूपवान् प्रद्युम्नजी आफ्नी प्रियतमा प्रभावतीलाई भन्न लागे – हे प्यारी प्रभावती ! हेर त आँखालाई बहुतै आनन्द दिने र मनलाई मोहित तुल्याउने पूर्णचन्द्र अहिले तिम्रो सुन्दर मुखकमलका लागि उपमान बनेका छन्। खुम्चिएका कमलहरूलाई छोडी भँमराहरूको समूह फक्रिएका चन्द्रकमलका कोशभित्र गइरहेका छन्। हे प्रियतमा ! भँमराहरूको भारले गर्दा केशर झरेका चन्द्रकमलहरू रतिक्रीडा गरेपछि तल्लो ओठमा चुम्बन गरिएका कामिनीका मुखमण्डलसमान देखिन्छन्। हे प्रियतमा ! बिस्तारै बिस्तारै चलिरहेको हावाको झोकाले कम्पायमान भएको अत्यन्त कोमल पालुवारूपी अञ्जलिद्वारा वृक्ष र लहराहरू पुष्पाञ्जलि अर्पण गरिरहेका छन्। मन्द हास्यरूपी पुष्पहरूको विकासले तेजिलो सुन्दर ओठरूपी पालुवा भएको र आँखिभौंको नृत्यद्वारा अत्यन्त सुन्दर तिम्रो मुख कमलको उद्यानझैं सुहाएको छ। प्रिय वाक्यको प्रयोगद्वारा प्रियतमाको प्रेम बढाउन चाहने रुक्मिणीपुत्र प्रद्युम्न त्यसबेला सुन्दर गिरिशिखरमा आनन्दपूर्वक भ्रमण गर्न लागे ॥३४-४०॥

त्यसपछि फुलेको कमलरूपी यौवनको सुवासले गर्दा पहेँलो वर्णकी देखिने तरङ्गहरूको मालारूपी पछ्यौरी ओढेर सुहाएकी, राजहंसका मृदु गुञ्जनरूपी नूपुर धारण गरेकी, कोइलीको जस्तो मधुर ध्वनि गुनगुनाउने प्रियवादिनी प्रभावती पनि चन्द्रकमलकै उपमान बनेकी थिइन् ॥४१॥

यसरी श्री वाग्वतीप्रशंसामा प्रद्युम्नविजयखण्डमा प्रभावतीविनोदन नामक दशौं अध्याय पूरा भयो ॥

## अथ एकादशोऽध्यायः

महेन्द्रदमनकृता शिवाराधना देवासुरसङ्ग्रामश्च

(महेन्द्रदमनले गरेको शिवाराधना र देवासुरसङ्ग्राम)

पुलस्त्य उवाच

ततो विवर्णे शशिनि प्रवाति मलयानिले। सम्प्राप्तं नारदं दृष्ट्वा प्रद्युम्नो वाक्यमब्रवीत् ॥१॥
कथं जेयः स देवर्षे दानवेन्द्रः सुदुर्जयः। अत्यक्तबालभावेन स्वल्पवीर्येण वै मया ॥२॥
तस्य तद्वचनं श्रुत्वा प्रद्युम्नस्य महात्मनः। अब्रवीदीदृशं वाक्यं भगवान् नारदो मुनिः ॥३॥
जेष्यसि त्वं महाबाहो दानवेन्द्रं सुदुर्जयम्। ब्रह्मणो वचने पुण्ये विपरीतं न विद्यते ॥४॥
ब्रह्मणो वचनादेव दैत्येन्द्रेण दुरात्मना। जितं लोकत्रयं पूर्वं लोकपालाभिरक्षितम् ॥५॥

---

पुलस्त्य ऋषि भन्दछन् – प्रियतमा प्रभावतीका साथ एकान्तवार्ता र एकान्तविहार गरेपछि चन्द्रमा अस्ताएपछि मन्द मन्द मलयाचलको हावा चलिरहेको र लाग्दो प्रातःकालमा पाल्नुभएका नारदलाई देखी प्रद्युम्नले भने। हे देवर्षि ! त्यो अत्यन्त दुःखले मात्र जितिने दानव महेन्द्रदमनलाई कसरी जितिएला ? वास्तवमा म केटौले पाराको छु र अल्पपराक्रमी पनि छु। नारदमुनिले प्रद्युम्नको गौरवपूर्ण वचन सुनेपछि भन्नुभयो – हे महाबाहु प्रद्युम्न ! अविजेय दैत्यराज इन्द्रदमनलाई तपाईंले अवश्य नै जित्नुहुने छ। किनकि ब्रह्माजीको पुण्यमय वचन कहिल्यै खेर जाँदैन। ब्रह्माजीको वरदानको प्रभावबाट नै दुरात्मा दैत्येन्द्र महेन्द्रदमनले लोकपालहरूद्वारा राम्ररी रक्षा गरिएका तीनै लोकलाई वशमा पारेको थियो ॥१-५॥

तस्य तद्वचनं श्रुत्वा महर्षेरमितौजसः। कौतूहलपरो भूत्वा प्रद्युम्नो वाक्यमब्रवीत् ॥६॥
कस्मिन्नवसरे लब्धं ब्रह्मणो वचनं शुभम्। कीदृशेन विधानेन जितं लोकत्रयं पुरा ॥७॥
स च कस्य सुतो दैत्यः श्रोतुमिच्छाम्यहं मुने। ज्ञाता त्वमसि सर्वेषां कार्याणाञ्च तपोधन ॥८॥
तस्य तद्वचनं श्रुत्वा प्रद्युम्नस्य महात्मनः। कथां मङ्गलसंयुक्तां कथयामास नारदः ॥९॥
राजा बाण इति ख्यातः शोणितापुरसुप्रियः। रोहिणी नाम विख्याता देवी तस्य महीपतेः ॥१०॥
तस्या देव्या विशालाक्ष्या गर्भादेव भयावहः। नृपतेस्तनयः श्रीमान् सुषुवेऽसुरसत्तमः ॥११॥
तस्य सञ्जातमात्रस्य प्रचचाल महीतदा। स्पन्दतेऽदक्षिणं चक्षुः सहस्राक्षस्य धीमतः ॥१२॥
सञ्जातविस्मयैः शीघ्रं शास्त्रविद्भिर्महर्षिभिः। अग्रे परीक्षितं तस्य लक्षणं देहसंश्रितम् ॥१३॥
इन्द्रस्य दमनं यस्तु करिष्यति महाबलः। इतीन्द्रदमनो नाम ख्यायते शास्त्रदर्शिभिः ॥१४॥
वीर्येण वयसा चापि बभूवाऽत्यर्थसंश्रितः। किमर्थमजिते शक्रे मम नाम तथाविधम् ॥१५॥
कृतं महर्षिभिरिति लज्जया व्यथितेन्द्रियः। सत्त्ववीर्यगुणोपेतस्तपसे कृतनिश्चयः ॥१६॥
स प्रपच्छ गुरुं गत्वा ज्वलन्तं स्वेन तेजसा। गुरोर्गुरुतरं वाक्यं श्रुत्वा हृष्टो महासुरः ॥१७॥
रुद्रधारोदये तीर्थे चकार नियमैस्तपः। वर्षाणां हि सहस्राणि पञ्च चात्र वरेप्सया ॥१८॥
तपसा राधयामास भगवन्तं त्रिलोकपम्। प्रभावात्तपसस्तस्य समाकृष्टो जगद्गुरुः ॥१९॥
विमानेनाऽऽर्कवर्णेनाऽऽविरासीच्चतुराननः। ततः सम्भ्रममादाय प्रहृष्टोऽसुरसत्तमः ॥२०॥
ब्रह्माणं वरदं दृष्ट्वा चेदं वचनमब्रवीत्। सुरैरजेयमिच्छामि वरं दातुं त्वया प्रभो ॥२१॥
त्रैलोक्यविजयं चैव यदि तुष्टोऽसि साम्प्रतम्। ततो दैत्यवचः श्रुत्वा भगवांश्चतुराननः ॥२२॥
प्रफुल्लनयनो भूत्वा चेदं वचनमब्रवीत्। अजेयस्त्वं सुरैर्भूत्वा किन्तु स्वर्गनिवासिभिः ॥२३॥
त्रैलोक्यविजयी चैव भविष्यसि महासुरः। एवं सम्भाष्य तं दैत्यं तपःस्थमसुरोत्तमम् ॥२४॥
विमानेनाम्बरतलं विवेश कमलोद्भवः। ततो लब्धवरो वीरो वीरनायकवेष्टितः ॥२५॥

---

महान् तेजस्वी महर्षि नारदको वचन सुनेर अत्यन्त चाख लिई प्रद्युम्नले भन्न लागे। हे महर्षि नारदजी! महेन्द्रदमनले कुन समयमा ब्रह्माजीको शुभ आज्ञा पायो ? फेरि उसले कसरी तीनै लोकलाई वशमा पाऱ्यो ?। हे तपस्या नै धन भएका देवर्षि नारदजी ! महेन्द्रदमन कसको छोरो हो ? हे मुनिवर म यो सबै सुन्न चाहन्छु। तपाईं सबै विषयका ज्ञाता हुनुहुन्छ। त्यसैले म सबै कुरा सुन्न चाहन्छु ॥६-८॥

महामहिमामय प्रद्युम्नको त्यो निवेदन सुनेर देवर्षि नारदजीले पनि मङ्गलमय कथा भन्नुभयो। हे वीरशिरोमणि प्रद्युम्न ! शोणितपुरमा अत्यन्त प्रख्यात बाणनामक राजा थिए। उनै राजाकी रोहिणी नाम भएकी रानी थिइन्। महाराज बाणको वीर्यबाट विशाल नयन भएकी रोहिणी रानीको गर्भद्वारा तीनै लोकलाई भयभीत तुल्याउने उत्तम बालक पैदा भयो। त्यसबेला असुरबालकले जन्म लिने बित्तिकै भूकम्प गयो, त्यतिबेला नै महाप्राज्ञ इन्द्रमहाराजको बायाँ आँखा फर्फरायो ॥९-१२॥

आश्चर्यचकित भएका शास्त्रज्ञ महर्षिहरूले छिटै नै त्यस बालकको लक्षणको परीक्षण गरे। त्यस महाबली वीरले इन्द्रलाई दमन गर्नेछ,त्यसैले शास्त्रदर्शीहरू यसलाई इन्द्रदमन नामबाट पुकार्नेछन्। शक्ति र सौन्दर्यको खानी महेन्द्रदमन मनमनै भन्न लागे – मैले त इन्द्रको दमन गरेको छैन, फेरि महर्षिहरूले मलाई किन इन्द्रदमन नामले सम्बोधन गर्नुभयो ? आफ्नो नाम महेन्द्रदमन राखिएका कारण लाजले भुतुक्क भएका तर शरीर एवं आत्माको बल र गुणहरूले सम्पन्न त्यस बालकले तपस्या गर्ने निश्चय गऱ्यो। आफ्नो ब्रह्मतेजद्वारा धपधप बलेका गुरुका अगाडि गएर गुरुको गरिमामय वचन सुनेर दै त्यबालक प्रसन्न भयो। उनले वरदानको इच्छाले रुद्रधारोदयतीर्थमा पाँच हजार वर्षसम्म तपस्या गरे। उनले यम, नियमपूर्वक गरिएको तपस्याले त्रिलोकरक्षक भगवान् शङ्करलाई सन्तुष्ट बनाए। उनको तपस्याको प्रभावबाट जगद्गुरु चतुर्मुख ब्रह्माजी पनि सूर्यसमान तेजस्वी विमानमान भई प्रकट हुनुभयो। ब्रह्माजी प्रकट भएपछि हतारिँदै ती असुरश्रेष्ठ प्रसन्न भए ॥१३-२०॥

ब्रह्माजीलाई वरदान दिन तयार भएको देखेर तपस्वी इन्द्रदमनले बिन्ती गरे– हे प्रभो !अहिले हजुर यदि मप्रति सन्तुष्ट हुनुहुन्छ भने म हजुरसँग यही वर चाहन्छु कि देवताहरूले हामी दैत्यलाई जित्न नसकून् र म तीनैलोकलाई जित्न सकूँ। महेन्द्रदमनको बिन्ती सुनेपछि भगवान् ब्रह्माजी प्रसन्न हुनुभयो र भन्नुभयो – हे दानवराज ! तिमी स्वर्गवासी देवताहरूले अजेय भइरहने छौ। तिमी त्रैलोक्यविजयी पनि हुनेछौ। हे महासुर ! यस कुरामा कुनै शङ्का छैन। यसरी तपःसाधनामा जुटेका तपस्वी महेन्द्रदमनलाई आज्ञा गर्नुभयो। त्यसपछि ब्रह्माजी विमानमा सवार भई आकाशभित्रै प्रवेश गर्नुभयो। अनि ब्रह्माजीबाट वरदान प्राप्त गर्ने वीर इन्द्रदमनलाई वीरहरूले चारैतिर घेरे ॥२१-२५॥

परिवार्यासुरगणैरभिषिक्तो रराज ह। सामन्तैर्बहुभिः सार्धं मन्त्रिभिश्चानुयायिभिः ॥२६॥
कूष्माण्डं प्रेषयामास देवेन्द्रस्य तु संसदि। गत्वा शक्रसभामध्ये सत्त्वरोऽसूरदूतकः ॥२७॥
अब्रवीदृशं वाक्यं कूष्माण्डो घोरविक्रमः। प्रदत्तं ब्रह्मणा राज्यं मम भर्त्रे पुरन्दरः ॥२८॥
राज्यानि वीरभोग्यानि त्यक्तुमस्मात्त्वमर्हसि। दूतस्य वचनं श्रुत्वा रोषाद्रक्तविलोचनः ॥२९॥
अब्रवीदीदृशं वाक्यं भगवान् पाकशासनः। राज्यं त्यक्तुं न पश्यामि विना युद्धेन दानव ॥३०॥
राज्यानि वीरभोग्यानि वीर्यं तद् द्रष्टुमर्हसि। इत्युक्तस्य सुरेन्द्रस्य वाक्यं सङ्ग्रामसूचकम् ॥३१॥
कथयामास सम्प्राप्तो दूतो दैत्येन्द्रसंसदि। स्वदूतवचनं श्रुत्वा ज्वलत्कोपानिलाकुलः ॥३२॥
उद्योगस्य समारम्भं चकाराऽसुरसत्तमः। ततस्तस्मिन् क्षणे पुण्ये प्रहतोद्योगदुन्दुभौ ॥३३॥
सम्प्राप्ते भगवान् शक्र इदं वचनमब्रवीत्। जयार्थेनाऽऽत्मनो वीरं भ्रातरं कच्छपासुरम् ॥३४॥
पुरस्कृत्य प्रयातव्यं शङ्खं शङ्खसमस्वनम्। तस्य नादेन घोरेण महीकम्पप्रदायिना ॥३५॥
जायते समरे नूनं रिपूणां मतिविभ्रमः। जित्वा शीघ्रं दुरात्मानं सुरेन्द्रं समराध्वरे ॥३६॥
पूरणीयस्त्वया पुत्र पूर्वजानां मनोरथः। इत्युक्त्वा गुरुणा शीघ्रं दत्ताशीर्दैत्यसत्तमः ॥३७॥
निर्ययौ स्वबलैः सार्धं मेरु पृष्ठंमनोरमम्। त्वरेण मेरुमासाद्य स्वसैन्यपरिवारितः ॥३८॥
युद्धाय प्रार्थयामास सुरेन्द्रं स महासुरः। रिपोरागमनं ज्ञात्वा देववृन्दपुरःसरः ॥३९॥
निर्ययौ भगवानिन्द्रो योद्धुं युद्धविशारदः। ततः पपात सहसा शरवृष्टिर्निरन्तरम् ॥४०॥
ननाद रणकुञ्जौघः प्रवेशैः सह पुष्करः। हस्तिनां क्रौञ्चरावैश्च ह्रेषितैश्चापि वाजिनाम् ॥४१॥
बभूव तुमुलं घोरं गर्जितैश्चाऽमरद्विषाम्। तस्मिन्नवसरे घोरे रिपुचित्तविदारिणाम् ॥४२॥

---

त्यस वरदानका प्रभावले दानववीर सेनानायकहरूले युक्त भएर अनेकौं बलवान् मन्त्री र अनुयायीहरूका साथ सम्पूर्ण दैत्यहरूद्वारा राजसिंहासनमा राखी अभिषेक गरिंदा ती इन्द्रदमन सुहाए ॥२६॥ राज्यारोहणपछि महेन्द्रदमनले स्वर्गका अधिपति महाराज इन्द्रको सभामा कूष्माण्ड नाम भएको दैत्यलाई दूत गराई पठाए। तुरुन्त नै त्यो घोरविक्रम कूष्माण्डनामक दूत इन्द्रको सभामा गई भन्न लागे – हे देवराज ! ब्रह्माजीले यो राज्य मेरो राजालाई दिनुभएको छ। राज्यहरूको भोग वीरहरूले गर्दछन्। यसकारण तपाईंले राज्यत्याग गर्नुहोस् ॥२७–२९॥

दैत्यदूतको कुरा सुनेर इन्द्रले भने – हे दानव ! युद्ध गर, विनायुद्ध म राज्यत्याग गर्न असमर्थ छु। अवश्य नै राज्य वीरहरूद्वारा भोग गरिने वस्तु हो, तिमीहरूले युद्धमा मेरो पराक्रम देख्न सक्नेछौ। यसरी इन्द्रको युद्ध गर्ने मनसायको कुरा सुनेर दूतले दैत्येन्द्रको सभामा आएर इन्द्रको कुरा बतायो। आफ्नो दूतको कुरा सुनेर इन्द्रदमन रिसायो। त्यस असुरराजले युद्धको तयारी गर्‍यो। त्यसबेला इन्द्रले युद्धका बाजा बजाएर युद्धको साइत गरे। इन्द्रले युद्धको तयारी गरेपछि महेन्द्रदमनले आफ्नो विजयको इच्छाले वीर भाइ कच्छपासुरलाई आज्ञा दिए ॥३०–३४॥

तिमीहरू शङ्खको जस्तो स्वर भएको शङ्खासुरलाई अगाडि लगाएर युद्धमा जाओ। पृथ्वीलाई कम्पायमान गराउने त्यस शङ्खासुरको घोर आवाज हुनेछ। लडाईंमा शत्रुहरूको अवश्य नै मतिविभ्रम हुनेछ र छिट्टै नै दुष्ट इन्द्रलाई सङ्ग्रामयज्ञमा जितेर तिमीले आफ्ना पितृहरूको मनोरथ पूरा गर्नुपर्दछ। यति आफ्नो भाइलाई अह्राएर मान्यजनहरूको आशीर्वाद समेत लिई दैत्यराज इन्द्रदमनले आफ्ना सैनिकहरूका साथ लागी तुरुन्त नै सुमेरुशिखरमा पुगेर सुरेन्द्रलाई युद्धका निम्ति हाँक दिए ॥३५–३७॥

यतातिर शत्रु आएको थाहा पाएर देवताहरूलाई अगाडि लगाई युद्धकलाविशारद इन्द्र पनि युद्धका लागि मैदानमा आएर त्यसपछि निरन्तर युद्धमा बाणवर्षा हुन लाग्यो। प्रलयकालको मेघहरूसमान रणवाद्यहरूको आवाज हुन लाग्यो, यस्तै हात्तीहरूको क्रौञ्चघोष र घोडाहरूको हिनहिनाहट शब्द एवं दैत्यहरूको गर्जनका साथ तुमुल तथा घोर युद्ध भयो ॥४१–४२॥

ननादाऽतिशयं शङ्खं स्वरेण समरान्तरे। ततो वेगाद्विनिष्पत्य रथेन रथमूर्धनि ॥४३॥
केशं जग्राह शक्रस्य सोऽसुरः क्रोधमूर्च्छितः। ततस्तस्य भयात्त्रस्तो मुक्तकेशोऽमराधिपः ॥४४॥
तत्क्षणात् स्वरथं त्यक्त्वा विवेश गगनस्थलम्। ततस्तस्मिन् क्षणे घोरे दानवा घोरविक्रमाः ॥४५॥
पुरन्दरपुरं भेत्तुं चक्रिरे विस्मयाकुलाः। ततस्तस्मिन् क्षणे प्राप्तो विमानेन चतुर्मुखः ॥४६॥

ब्रह्मोवाच

रणे विजयिनं वीरं दैत्यन्द्रमिदमब्रवीत्। भेत्तुं नलभ्यते दैत्य ममतेजोऽभिरक्षितम् ॥४७॥
पुरन्दरपुरं रम्यमन्यैरप्यमरादिभिः। परा प्रांशुर्भवेत् कीर्तिजयेनाऽनेन मानद ॥४८॥
तवेन्द्रदमनो नाम सत्यमद्य प्रवर्तते। मयेनाऽसुरमुख्येन पूर्वकाले विनिर्मितम् ॥४९॥
विलमस्ति महाबाहो जठरे चन्दनागिरेः। तस्मिन् निवससि स्वेच्छं हे राजन् राजलीलया ॥५०॥
विविधोपद्रवग्रस्ते न त्वं स्वर्गे निवत्स्यसि। स्वर्गादादाय रत्नानि चित्राणि च बहूनि च ॥५१॥
मर्त्यलोकं प्रयातव्यं शासनान्मम मानद ! एवं सम्भाष्य दैत्येन्द्रं प्रस्थाप्य धरणीतलम् ॥
सुरेन्द्रं रणविध्वस्तं भगवानिदमब्रवीत्। प्रादुर्भूते शचीनाथ मथुरायां मधुद्विषि ॥५३॥
तस्य पुत्रो महावीरः प्रद्युम्न इति विश्रुतः। द्वारकायां यदा जातो मधुकामांशसम्भवः ॥५४॥
कालशम्बरपूर्वेण स हनिष्यति ते रिपुन्। पुराकृतं तु यत्कर्म त्वया तदनुभूयते ॥५५॥
त्यक्तव्यमस्माद्वैराग्यं सर्वमेव ममाऽऽज्ञया। एवं सम्भाष्य नाथेन ब्रह्मणा भूरितेजसा ॥५६॥
अभिषिक्तः सहस्राक्षः प्रविवेशाऽमरावतीम्। ततो रसातलं रम्यं प्रविवेश महासुरः ॥५७॥
गर्जद्भिश्च प्रनृत्यद्भिः स्वसैन्यैः परिवारितः। रसातलं प्रविष्टे तु दानवे युद्धदुर्मदे ॥५८॥

---

त्यस घनघोर सङ्ग्राममा शत्रुहरूको चित्तलाई चिर्नका लागि शङ्खको जस्तो भयानक आवाज निकाल्ने शङ्खासुर कठोर गर्जना गर्न लाग्यो। त्यसै समयमा अत्यन्त वेगले इन्द्रदमन आफ्नो रथबाट शत्रुको रथको टुप्पामा कुदेर पुग्यो। क्रोधले आकुल व्याकुल भएको त्यस दैत्यले निकै रिसाएर इन्द्रको केश समात्यो। डराएका इन्द्र खुला कपाल राखी शिरपेचरहित भए। त्यसबेला उनी आफ्नो रथ छोडी आकाशमण्डलमा प्रवेश गरे। ठीक त्यही समयमा ती घनघोर पराक्रमी दैत्यहरू अमरावती घेर्न पुगे। उनीहरू आश्चर्यचकित भएर इन्द्रको अमरावतीलाई ध्वस्त गर्न तयार देखिए। यसै समयमा आफ्नो विमानमा विराजमान भएर ब्रह्माजी आउनुभयो ॥४३-४६॥

युद्धमा विजयी महेन्द्रदमनलाई ब्रह्माजीले भन्नुभयो – हे दानवश्रेष्ठ ! मेरो तेजद्वारा सुरक्षित स्वर्गपुरीलाई तहसनहस गर्न अरू देवता पनि समर्थ छैनन्। हे मानद ! यो विजयबाट तिम्रो सबभन्दा ठूलो कीर्ति रहनेछ। आजकै यस विजयघटनाबाट तिम्रो नाम यथार्थ इन्द्रदमन भयो। हे महाबाहु ! चन्दनागिरिको फेदीमा मयदानवले बनाएको सुन्दर गुफा छ। हे महाराज ! बडो विलासपूर्ण राजलीला गर्दै तिमी त्यहाँको सुन्दर गुफामा स्वेच्छपूर्वक बसी राज गर। अनेकौं उपद्रवले ग्रस्त यस स्वर्गमा तिमी बस्न सक्दैनौ। यसकारण स्वर्गबाट नानाप्रकारका चित्रविचित्रका धेरै रत्नहरू लिएर तिमी चन्दनागिरितर्फ लाग। हे शत्रुको मानमर्दन गर्ने दानव! अब मेरो निर्देशन अनुसार तिमी मर्त्यलोक जाऊ। यति भनेर दानवराज शङ्खासुरलाई पृथिवीतलमा पठाएपछि ब्रह्माजीले लडाईंमा पराजित भएका इन्द्रमहाराजलाई भन्न लाग्नुभयो ।४७-५२१/२॥

ब्रह्माजी भन्नुहुन्छ – हे शचीपति ! मथुरामा मधुसूदनले अवतार ग्रहण गरेपछि तिम्रो कल्याण हुनेछ ॥५३॥ मधुसूदन कृष्णका सुपुत्र अत्यन्त प्रख्यात प्रद्युम्न नाम गरेका वीर वसन्त र कामदेवको अंशलिएर उत्पन्न हुनेछन्। उनले कालशम्बर आदि तिम्रा शत्रुलाई मार्नेछन्। हे इन्द्रमहाराज ! जुन कर्म तिमीले पूर्वजन्ममा गरेका थियौ, त्यसको प्रारब्ध अहिले भोग गरिरहेका छौ। यसो हुँदा मेरो भनाइमा विश्वास गरी सम्पूर्ण वैराग्य र चिन्ता छाडिदेऊ। यसरी अनेकौं ज्ञानोपदेशबाट सम्झाई बुझाई अतितेजस्वी लोकनाथ ब्रह्माजीले सहस्राक्षलाई फेरि पनि स्वर्गकै राजकाजमा अभिषेक गरेपछि मात्र इन्द्रले स्वर्गमा प्रवेश गरे। यता विजयी महेन्द्रदमन पनि अत्यन्त सुन्दर रसातलमा पुगे। यसपछि नाच्दै गर्जदै आफ्ना सैनिकहरूका साथ युद्धमा कसैले दबाउन नसकिने दानव महेन्द्रदमनले रसातलमा प्रवेश गरे ॥५२-५८॥

दुद्रुवुः शरणं सर्वे पन्नगाः पन्नगेश्वरम्। पन्नगानां हितार्थेन वासुकिर्भुजगाधिपः ॥५९॥
दत्त्वा रत्नान्यनेकानि दैत्येन्द्रमिदमब्रवीत्। जितं पूर्वं भवत्कीर्त्या सर्वमेव रसातलम् ॥६०॥
जेतुं नापेक्षते राजन् पुनरागत्य विग्रहैः। तस्य तद्वचनं श्रुत्वा दत्वाऽर्घ्याणि बहूनि च ॥६१॥
रत्नान्यन्यानि दैत्येन्द्रो मर्त्यलोकं समाययौ। मर्त्यलोके च भूपालान् जित्वा सर्वान् पृथक् पृथक् ॥६२॥
वस्त्राभरणरत्नानि दत्त्वाऽर्घ्याणि समाददे। ततो मन्त्रं समालोच्य मन्त्रिभिः सहसोऽसुरः ॥६३॥
विश्वकर्माणमादिश्य निर्ममे भवनोत्तमम्। रुरोध वाग्वतीं चैव चन्दनागिरिमालया ॥६४॥
सेतुसंरक्षणे शङ्खं स्थापनामास सादरम्। आदिदेश निवासाय विराधं वाग्वतीजले ॥६५॥
स्वसा प्रभावती चापि यथा कामं प्रवर्तिता। कन्याशतं समाहृत्य विवाहेन महासुरः ॥६६॥
विवेश भवनं रम्यं सुप्रभानाम विश्रुतम्। हेमवेश्मसमाकीर्णे रत्नतोरणशोभिते ॥६७॥
तडागोद्यानरुचिरे विलेऽस्मिन् सुमनोरमे। कामिनीभिः सह स्वेच्छं सततं राजलीलया ॥६८॥
बुभुजेऽतिचिरं सौख्यं सोऽसुरो देवदुर्जयः। ब्रह्मणो वचनात्तत्र विपरीतं न विद्यते ॥६९॥
ब्रह्मणो वचनादेव जेष्यते नियतं त्वया। इत्युक्तवति देवर्षौ दिदीपे शिखरे गिरेः ॥७०॥
पद्मरागशलाकाभिरिव रश्मिभिरंशुमान्। ततो मुनेर्वाक्यविबुद्धमानसं विलोलहारं हरिचित्तनन्दनम्।
रराज कन्दर्पवपुः प्रभावतीभुजद्वयालिङ्गनबन्धनच्युतम् ॥७१॥

इति श्रीवाग्वतीप्रशंसायां प्रद्युम्नविजये नारदालापो नामैकादशोऽध्यायः।

---

यसपछि सम्पूर्ण नाग र नागका अधिपति नागराज वासुकिको शरणमा पुगे। आफ्ना प्रजा सर्पहरूको हितका लागि सर्पराज वासुकिले पनि अनेक रत्नहरू दिई दैत्यराज महेन्द्रदमनसँग भने – हे महाराज ! तपाईंको कीर्तिले पहिले नै सम्पूर्ण रसातल जितिएको छ। अहिले यहाँ युद्धद्वारा जित्नु पर्ने कुनै आवश्यकता छैन। वासुकिको त्यो वचन सुनेर धेरै नै मूल्यवान् अनेकौं रत्नहरू लिएर दैत्यराज महेन्द्रदमन मर्त्यलोकमा आइपुगे र त्यहाँ पनि धेरै राजाहरूलाई बेग्लाबेग्लै जिते। ती जितिएका राजाहरूबाट समर्पण गरिएका अमूल्य वस्त्र, गहना र अनेकौं रत्नहरू पनि विजयी महेन्द्रदमनले लिए। त्यसपछि उनले आफ्ना मन्त्रीहरूका साथ सल्लाह गरे ॥५९–६३॥

देवशिल्पी विश्वकर्मालाई आदेश दिएर उत्तम दरबार बनाए। चन्दनागिरिको मालाद्वारा वाग्वती नदीलाई रोकेर त्यस बाँधको रक्षाका लागि बडो आदर साथ शङ्खासुरलाई नियुक्त गरे। वाग्वतीकै जलमा सदा वास गर्नका लागि विराध नाम गरेको दानवलाई आज्ञा दिए। आफ्नी बहिनी प्रभावतीलाई स्वच्छन्द विहार गर्ने आज्ञा दिए। आफूले पनि सयौं कन्याहरूका साथ विवाह गरी ती महासुर रमणीय सुप्रभानामक राजधानीको रमणीय राजभवनमा प्रवेश गरे। सुनैसुनका घरहरूले परिपूर्ण, रत्नैरत्नका तोरणहरूद्वारा सुहाएको इनार, कुवा, तलाउ र बगैंचा आदिले अत्यन्त आकर्षक त्यस चन्दनागिरिको सुन्दर गुफामा सबै सुन्दरीहरूका साथ स्वेच्छापूर्वक राजलीला गर्दै धेरै समयसम्म देवताहरूद्वारा पनि अजेय भई महेन्द्रदमनले सुख भोग सम्पादन गरे ॥६४–६८॥

ब्रह्माजीको वरदानको प्रभावबाट त्यहाँ भोगसाधनमा सबै कुरा मिल्दै आयो। त्यसैले ब्रह्माजीकै वचन अनुसार तपाईंले त्यस दैत्यलाई अवश्य नै जित्नुहुनेछ भी देवर्षि नारदबाट आज्ञा गरिएपछि पर्वतको चुचुरामा पद्मरागमणिको टुक्राजस्तै आफ्नो तेजसहित भगवान् सूर्य देदीप्यमान भए। त्यसपछि मुनि नारदजीको वचनबाट उत्साहित भएर प्रसन्न मुद्रामा उभिएका चञ्चल र अत्यन्त सुन्दर माला पहिरने, हरि भगवान्को चित्तलाई ज्यादै आनन्द दिने र प्रभावतीले आलिङ्गन गरिएको दुई हातरूपी बन्धनबाट छुटेका प्रद्युम्न कामदेवझैं सुहाए ॥६९–७१॥

यसरी वाग्वतीप्रशंसामा प्रद्युम्नविजयखण्डको नारदसँगको वार्तालाप नामको एघारौं अध्याय समाप्त भयो।

# अथ द्वादशोऽध्यायः

प्रभावतीप्रद्युम्नविवाहः प्रद्युम्नस्य दानवैः सह युद्धञ्च

(प्रभावती र प्रद्युम्नको विवाह एवं प्रद्युम्नको दानवका साथमा युद्ध)

पुलस्त्य उवाच

ततः प्रहृष्टहृदयां हर्षरोमाञ्चितां प्रियाम्। अब्रवीदीदृशं वाक्यं श्रीमान् मकरकेतनः ॥१॥
पतिव्रते त्वया देवि क्रियतां मम मङ्गलम्। महर्षेर्वचनं चैव श्रुतं ते कमलानने ॥२॥
ततः प्रभावती देवी वाष्पपूर्णविलोचना। मङ्गलं रचयामास पत्युर्जयविधायिनी ॥३॥
मङ्गलं रचितं दृष्ट्वा देव्या मकरकेतनम्। अब्रवीदीदृशं वाक्यं नारदो मुनिसत्तमः ॥४॥
त्वत्पिता भगवान् विष्णुः शङ्खचक्रगदाधरः। अद्य त्वद्विजयं द्रष्टुं गरुडेनाऽऽगमिष्यति ॥५॥
तवैव विजयं द्रष्टुं प्रहृष्टैस्त्रिदशैः सह। आगमिष्यति तत्रैव भगवान् पाकशासनः ॥६॥
शङ्खो नाम दुराधर्षः शङ्खदुन्दुभिनिस्वनः। सेतुं संरक्ष्य यत्नेन तिष्ठते देवकण्टकः ॥७॥
बलात्पादेन सम्पीड्य जयार्थेनाऽऽत्मनस्त्वया। पूरणीयो दुराचारो यथाऽसौ स्यान्महास्वनः ॥८॥
तस्य नादेन घोरेण वज्रनिर्ह्रादवर्चसा। भविष्यति महाँस्त्रासो दानवानां दुरात्मनाम् ॥९॥
हत्वा दैत्यं दुरात्मानं सानुजं राज्यदर्पितम्। पूरणीयस्त्वया तत्र देवेन्द्रस्य मनोरथः ॥१०॥
इत्युक्त्वा मुनिना शीघ्रं जयाशिषा सुपूजितः। निर्ययौ रुक्मिणीसुनूरम्यं शङ्खालयं गिरिम् ॥११॥
स्थित्वा शङ्खविलद्वारे कृतनादो महाबलः। सेतोर्विदारणारम्भं चकार मकरध्वजः ॥१२॥
ततः शङ्खो विनिष्क्रम्य स्वविलाद् बलदर्पितः। अब्रवीदीदृशं वाक्यं दंष्ट्रोद्दीप्तविलोचनः ॥१३॥

---

पुलस्त्य ऋषि आज्ञा गर्दछन् – त्यसपछि देवर्षि नारदजीबाट दानव महेन्द्रदमनको उपाख्यान सुनिसकेपछि प्रसन्न हृदय भएकी र हर्षले रोमाञ्चित भएकी प्रियतमा प्रभावतीलाई कामदेवका विभूति प्रद्युम्नले भने। हे प्रियतमा पतिव्रता प्रभावती ! तिमी मेरो सङ्ग्रामयात्राका निम्ति मङ्गलका सरसामान जुटाऊ। हे कमलका दलजस्ता आँखा भएकी प्रभावती ! महर्षि नारदजीको सबै वचन तिमीले सुनेकी छौ ॥१-२॥

यति कुरा सुनेर प्रभावती देवीले आँखाभरि आँसु गराएर पतिदेवको विजय होस् भन्ने उद्देश्यले मङ्गलका सामग्री तयार गरिन्। देवी प्रभावतीद्वारा माङ्गलिक सरसामान जुटाइएको देखेर मुनिश्रेष्ठ नारदजी प्रद्युम्नसँग भन्न लागे – हे प्रद्युम्न ! शङ्ख, चक्र र गदा धारण गर्नुहुने तपाईंका परमपूज्य पिता भगवान् विष्णुका साक्षात् विभूति श्रीकृष्ण पनि आज तपाईंको विजय हेर्न आउनुहुनेछ। यस्तै तपाईंको विजय हेर्नका लागि प्रसन्न चित्त भएका देवताहरूका साथ देवराज इन्द्र पनि त्यहीँ नै आउनेछन्। शङ्ख एवं दुन्दुभिको जस्तै भयङ्कर शब्द गर्ने र कसैले दबाउन नसकिने देवताहरूका लागि कण्टकसमान शङ्खासुर पनि प्रयासपूर्वक सेतुको रक्षा गर्न जुटेको छ। तपाईंले आफ्नो विजयका लागि आफ्ना पाउले शङ्खासुरलाई च्यापेर दमाहाफैं बजाई ठूलो आवाज पैदा गराउनुहोस्। त्यस दुन्दुभिताडनको वज्रपाततुल्य घनघोर आवाजबाट दुरात्मा दानवहरू अत्यन्त भयभीत हुनेछन् ॥३-९॥

हे बाबु प्रद्युम्न ! राज्यको मदले गर्दा बहुतै अहङ्कारी बनेको महेन्द्रदमनलाई भाइसहित मारेर इन्द्रको मनोरथ पूरा गराउनुहोस्। यसरी नारद मुनिद्वारा विजयका लागि आशीर्वचनद्वारा सम्मानित भएका प्रद्युम्न शङ्खालय पर्वतमा गए। त्यहाँ पुगी महाबली प्रद्युम्नले शङ्खासुरको गुफाको ढोकामा उभिएर सिंहको जस्तो शब्द गरी बाँध फोर्न प्रारम्भ गरे। यत्तिकैमा क्रोधले दाँत तथा आँखा र बलको घमण्डले चूरचूर भएको शङ्खासुर आफ्नो गुफाबाट निस्केर भन्न लाग्यो ॥११-१३॥

शङ्खासुर उवाच

कस्याऽऽज्ञया त्वया क्रूर मम वीर्याभिरक्षितम्। अगम्यं त्रिदशैर्वापि क्रियते सेतुदारणम् ॥१४॥
इत्युक्त्वा सहसा दैत्यो रक्तास्यो रक्तमूर्धजः। तलेनाऽऽहत्य प्रद्युम्नं चकार मतिविह्वलम् ॥१५॥
ततः क्षणात्समुत्थाय बाहुयुद्धेन दानवम्। भूमौ निपातयामास प्रद्युम्नो बलिनांवरः ॥१६॥
भूमौ निपतितं शङ्खं विष्णुशङ्खसमस्वनम्। पादेनाऽऽक्रम्य जठरे प्रपूरेऽतिशयं तदा ॥१७॥
शङ्खनादेन घोरेण प्रबुद्धः कच्छपासुरः। जलान्निष्क्राम्य वदनं ननादाऽतिशयं भयात् ॥१८॥
ततो विराधं घनघोरनिस्वनं महामुखं मण्डललोचनद्वयम्। ददर्श वीरो मधुसूदनात्मजो जलोषितं शैलसमानविग्रहम् ॥१९॥

इति श्रीवाग्वतीप्रशंसायां प्रद्युम्नविजये विराधदर्शनो नाम द्वादशोऽध्यायः ॥

---

शङ्खासुर भन्दछ – हे क्रूर ! कसको आज्ञा पाई तैंले मेरो पराक्रमबाट सुरक्षित भएको र देवताहरूद्वारा पनि अगम्य सेतु भत्काउन लागिस्। यसरी भनेर रातो मुख र रातै केश भएको त्यस दैत्यले प्रद्युम्नलाई चपेटाले हिर्काएर मूर्च्छित गरायो। त्यसपछि पराक्रमीहरूमा सर्वश्रेष्ठ प्रद्युम्नले पनि एकै क्षणमा उठेर बाहुयुद्ध र कुस्ती आदि युद्ध गरी त्यस दानवलाई भुईंमा लडाउनुभयो। भगवान् विष्णुको शङ्खको जस्तै शब्द निकाल्ने भुईंमा लम्पसार परेको शङ्खासुरको पेटमा लातीले हानी बडो जोडले फुकिदिए ॥१४–१७॥

यस किसिमको भयङ्कर शङ्खको आवाजले गर्दा जागेको कच्छपासुर जलबाट शिर निकाली अत्यन्त डराएर चीत्कार गर्न लाग्यो। यत्तिकैमा घनघोर गर्जना गरिरहेको, लामो लामो मुहुडा भएको र बाटुला बाटुला दुई आँखा भएको रपर्वत जस्तो विशाल शरीर भएको र जलमा बसिरहेको विराध दैत्यलाई श्रीकृष्ण भगवान्का सुपुत्र वीरश्रेष्ठ प्रद्युम्नले देखे ॥१८–१९॥

यसरी श्रीवाग्वतीप्रशंसामा प्रद्युम्नविजय खण्डमा विराधको दर्शननामक बाह्रौं अध्याय सकियो।

# अथ त्रयोदशोऽध्यायः

महेन्द्रदमनप्रद्युम्नसंवादो महेन्द्रदमनवधश्च

(महेन्द्रदमन र प्रद्युम्नको संवाद तथा महेन्द्रदमनवध)

पुलस्त्य उवाच

ततः शङ्खनिनादेन विराधस्य स्वनेन च। विलं प्रकम्पितं दृष्ट्वा किमिदं कृतसम्भ्रमः ॥१॥
परिशङ्क्य रिपोः किञ्चिद् भयं भयविधायिभिः। निमित्तैः सहसा राजा खड्गबाणधनुर्धरः ॥२॥
सम्बद्धकवचैर्घोरैर्योधैः कतिपयैर्वृतः। शैलशृङ्गप्रतीकाशो भिन्नवैदूर्यसप्रभः ॥३॥
अविरोधितवैर्योको विराधाख्यं ममाऽनुजम्। विरोधयति दुर्बुद्धिरित्युक्त्वा क्रोधमूर्च्छितः ॥४॥
निष्क्रम्य स्वविलात्तस्थौ श्रीमानसुरसत्तमः। समक्षे पतितं शत्रुं निर्दहन्निव तेजसा ॥५॥

---

पुलस्त्य भन्दछन् – त्यसपछि शङ्खासुरको शङ्खनाद तथा विरोधको घनघोर आवाजले गर्दा आफ्नो गुफा नै थर्थर काँपेको देखी यो के भयो भनी केही शङ्कित भै फटपट राजा महेन्द्रदमन हातमा खड्ग, धनु र बाण लिई शरीरभर अभेद्य कवच धारण गरेका कतिपय वीर योद्धाहरूका साथ रही भन्न लागे – शैलशिखर भैं विशाल शरीर भएको, सफा वैदूर्यमणिको जस्तो चहक भएको, अहिलेसम्म जसका साथ कुनै वैरीले विरोध गर्ने साहस गरेका थिएनन्, त्यो मेरो भाइ विराधका साथ कुनचाहिं दुर्बुद्धिले विरोध गर्‍यो ? यति भनी क्रोधले चूर भई आफ्नो गुफाबाट बाहिर आएर सामु परेका शत्रुलाई तेजले डढाउँला जस्तै गरी त्यस सङ्ग्राममा खडा भए ॥१–५॥

ततो विरोधितं त्यक्त्वा विराधं कूर्मरुपिणम्। दैत्येन्द्राभिमुखं तस्थौ रथमारुह्य कैशविः ॥६॥
प्रत्यक्षमागतं दृष्ट्वा प्रद्युम्नं युद्धकाङ्क्षिणम्। अब्रवीदीदृशं वाक्यं श्रीमानसुरसत्तमः ॥७॥
कस्याऽऽज्ञया त्वया क्रूरः बाध्यते मम कच्छपः। कस्य पुत्रोऽसि मूढ त्वं ज्ञातुमिच्छामि तत्त्वतः ॥८॥
तस्य तद्वचनं श्रुत्वा दैत्येन्द्रस्य महात्मनः। अब्रवीदीदृशं वाक्यं प्रद्युम्नो बलिनां वरः ॥९॥
निपातितो मया शङ्खः शङ्खदुन्दुभिनिस्वनः। विराधं पातयिष्यामि दुरात्मानं जलोषितम् ॥१०॥
प्रद्युम्न इति विख्यातो विष्णोर्भगवतः सुतः। प्राप्तो युष्मद्विनाशाय देवेन्द्रस्य शुभाऽऽज्ञया ॥११॥
तस्य तद्वचनं श्रुत्वा रोषाद्रक्तविलोचनः। अब्रवीदीदृशं वाक्यं विहस्याऽसुरसत्तमः ॥१२॥
यदि केशवपुत्रस्त्वं सम्प्राप्तो भद्रकं कृतम्। चिरकालं मया ध्यातं लब्धं सन्दर्शनं तव ॥१३॥
त्वां विलोक्य रणे सुप्तं रुधिरेण परिप्लुतम्। शम्बरस्य बधोद्भूतो मन्युरद्य प्रशाम्यति ॥१४॥
इत्युक्त्वा दशनैस्तीव्रैरधिपीड्याऽधरं स्वकम्। ववर्ष शरवर्षौघं श्रीमानसुरसत्तमः ॥१५॥
ततस्तस्मिन् क्षणे शीघ्रं प्रद्युम्नोऽपि महाबलः। अब्रवीदीदृशं वाक्यमुदितादित्यसन्निभः ॥१६॥
त्वां निपात्य दुरात्मानं त्रिदशाधिपकण्टकम्। चन्द्रावत्या विवाहं च निर्विघ्नं वर्तयाम्यहम् ॥१७॥
इत्युक्त्वा रुक्मिणीसूनुः कृतगाण्डीवमण्डलः। मुमोच सहसा बाणं रुक्मपुङ्खविभूषणम् ॥१८॥
ततस्तस्मिन् क्षणे पुण्ये वर्तमाने रणोत्सवे। गरुडेनाऽऽययौ विष्णुः शङ्खचक्रगदाधरः ॥१९॥
प्रहृष्टस्त्रिदशैः सार्धमप्सरोगणवेष्टितः। पूजार्थं रुक्मिणीसूनोः सम्प्राप्तस्त्रिदशेश्वरः ॥२०॥
ततो मुमोच दैत्येन्द्रो ज्वलत्कोपानलाकुलः। अघोरं च विघोरं च रौरवं च शिलीमुखम् ॥२१॥
उमामुखं विडालास्यं रुद्रकिङ्किणीभिः शरैः। तच्छरं वारयामास प्रद्युम्नोऽपि महाबलः ॥२२॥

---

त्यसपछि पहिले नै विरोध गर्ने कूर्मरूपी विराध दैत्यलाई छोडी प्रद्युम्न आफ्नो रथमा सवार भई दैत्यराज महेन्द्रदमनका अगाडि खडा भए। उनलाई देखेर महेन्द्रदमन भन्न लाग्यो – हे क्रूर दुष्ट ! तँ कसको छोरो होस् ? तँ कसको आज्ञाले मेरो भाइ कच्छपलाई सताइरहेको छस् ? म यथार्थ जान्न चाहन्छु। वीर दैत्यराज महेन्द्रदमनको त्यो वचन सुनेर बलवान्हरूमा सर्वश्रेष्ठ प्रद्युम्नले वीरोचित वचन भन्न लागे। हे दानवराज महेन्द्रदमन ! मैले शङ्ख र दुन्दुभिको जस्तो शब्द निकाल्ने शङ्खासुरलाई गिराइदिएँ, अब जलमै बसिरहेको दुरात्मा विराधलाई पनि मार्नेछु। म भगवान् विष्णुको पुत्र अत्यन्त प्रसिद्ध प्रद्युम्न हुँ। देवेन्द्रको शुभ आज्ञाबाट तिमीहरू जस्ता दुरात्माको विनाश गर्नका लागि यहाँ आएको छु ॥६-११॥

प्रद्युम्नको यस्तो वचन सुनेर रीसले लाल लाल आँखा भएको वीर महेन्द्रदमन पनि यसप्रकार हाँसेर भन्न लागे। यदि तिमी केशवकै छोरा हौ र यहाँ आएका छौ भने त राम्रै भयो। धेरै समयदेखि मैले तिमीलाई देख्न खोजेको थिएँ। आज तिमीलाई देखेँ। रगतले लतपतिएर सङ्ग्राममा सुतेको तिमीलाई देखेर शम्बरासुरको मृत्युबाट उठेको रीस आज शान्त हुनेछ ॥१२-१४॥

यति भनी दाँतले बेस्सरी आफ्नो ओठ दबाएर महेन्द्रदमन बाणको वर्षा गर्न लागे। त्यसबेला भर्खर मात्र उदाएका सूर्यको जस्तो लालवर्ण भएका प्रद्युम्नले पनि छिटै भन्न लागे – इन्द्रमहाराजका निम्ति काँडो जस्तो भएको हे दुष्ट ! तँलाई संहार गरी चन्द्रावतीका साथ विवाह पनि गर्नेछु ॥१७॥ आफ्नो शत्रुलाई यति भनेर रुक्मिणीपुत्र प्रद्युम्नले गाण्डीव धनुजस्तै आफ्नो धनुलाई मण्डलाकार गरी सुवर्णमय प्वाँख भएको बाण फटफट छोडिहाल्नुभयो। यही नै पुण्यक्षणमा जब रणोत्सवको प्रारम्भ मात्र भएको थियो, शङ्ख-चक्र-गदाधारी भगवान् विष्णु गरुडमाथि विराजमान भएर त्यहीँ नै आउनुभयो ॥१५-१९॥

ठीक त्यसैबेला प्रसन्न चित्त भएका सम्पूर्ण देवताहरूलाई साथमा लिई अनेकौं अप्सराहरूलाई वरिपरि लगाएर देवराज इन्द्रमहाराज पनि रुक्मिणीपुत्र प्रद्युम्नको वीरोचित सम्मान गर्न त्यही सङ्ग्राममा आइपुगे। त्यसपछि त्यस सङ्ग्राममा जाज्वल्यमान क्रोधाग्निद्वारा आकुल व्याकुल दैत्येन्द्रले अघोर, विघोर एवं रौरवनामका शस्त्र वर्षा गर्न लाग्यो। यस्तै यतातिर महाबली प्रद्युम्नले पनि उमामुख विडालास्य रुद्रकिङ्किणी आदि बाणको प्रगोगद्वारा दैत्येन्द्रको बाणहरूलाई रोकिदिए। त्यसपछि फेरि विशालबाहु त्यस असुरराजले गिद्ध, कौवा र लाटोकोसेराको जस्तो मुख भएको बाण प्रहार गरे ॥२०-२३॥

गृध्रकङ्कमखं चापि काकोलूकमुखं शरम्। मुमोच स महाबाहुः श्रीमानसुरसत्तमः ॥२३॥
व्याघ्रसिंहशृगालास्यैः श्वानवक्त्रैः शिलीमुखैः। तच्छरं वारयामास प्रद्युम्नो बलिनां वरः ॥२४॥
एकैकेनाऽत्र मुख्येन चैकैकमसुरं तदा। पातयामास प्रद्युम्नस्तत्क्षणात् समरान्तरे ॥२५॥
स्तोकावशिष्टं स्वबलं प्रसमीक्ष्य महासुरः। प्रद्युम्नस्य विनाशाय नागास्त्रं सन्दधे तदा ॥२६॥
ततो मुमोच सहसा श्रीमानसुरसत्तमः। विषाग्निज्वलिताकाशं नागास्त्रं घोररूपिणम् ॥२७॥
नागास्त्रं पतितं दृष्ट्वा विषवह्निकलापिनम्। हाहाकृतरवैर्देवैः प्रपूरे गगनं तदा ॥२८॥
नागास्त्रदग्धः प्रद्युम्नः पतितो मतिविह्वलः। पक्षवातेन तार्क्ष्यस्य लब्धचेता बभूव ह ॥२९॥
नागास्त्रं च दुराधर्षं तार्क्ष्यसम्पर्कपीडितम्। पपात सहसा भूमौ खण्डखण्डमनेकधा ॥३०॥
ततस्तस्मिन् क्षणे पुण्ये प्रद्युम्नं प्राप्य सत्वरः। अब्रवीदीदृशं वाक्यं भगवान् नारदो मुनिः ॥३१॥
ब्रह्मणा भाषितं पूर्वं स्मर वाक्यं जनार्दने। मागा विह्वलतां वीर पुत्रोऽसि मधुविद्विषः ॥३२॥
शस्त्रं नापेक्षते जेतुं हीनशस्त्रो भवद्रिपुः। मुष्टिमुद्यम्य वेगेन हन्यतां तस्य मूर्धनि ॥३३॥
तस्य तद्वचनं श्रुत्वा वेगान्निष्पत्य कैशविः। मुष्टिमुद्यम्य सहसा शिरस्येनमताडयत् ॥३४॥
ततः पपात दैत्येन्द्रः कम्पयन्निव मेदिनीम्। उद्वमन् रुधिरोद्गारं मुखेन नयनेन च ॥३५॥
सुप्रभावासिनः सर्वे निहते शत्रुतापने। पातालं विविशू रम्यं प्रद्युम्नभयपीडिताः ॥३६॥
विचित्रपुष्पं प्रचुरं नभस्थलात्पपात कन्दर्पशिरस्यलं तदा।
समं समन्तात् सुरसिद्धचारणैः समाहता दुन्दुभयः प्रसस्वनुः ॥३७॥

इति श्रीवाग्वतीप्रशंसायां प्रद्युम्नविजये महेन्द्रदमनवधो नाम त्रयोदशोऽध्यायः।

---

अर्कोतर्फ महाबली प्रद्युम्नले पनि बाघ, सिंह, श्याल र कुकुर आदिका जस्ता मुख भएकाबाणहरूद्वारा शत्रुहरूका बाणलाई रोकिदिए। त्यसबेला प्रद्युम्नले त्यस युद्धमा एक एक मुख्य बाणद्वारा महेन्द्रदमनका मुख्य मुख्य असुरलाई मारिदिए। त्यसपछि दानवराज महेन्द्रदमनले आफ्नो सेना थोरै मात्र बाँकी भएको देखी प्रद्युम्नलाई मार्नका निम्ति धनमा नागास्त्र सन्धान गरे। त्यसको केही क्षणमै आत्तिँदै दैत्यराज महेन्द्रदमनले निषाग्निद्वारा आकाशलाई नै बाल्ने घनघोर भीषण नागास्त्रको प्रयोग गरिहाले। विषाग्निको ज्वालाले वेरिएको नागास्त्रलाई आइरहेको देखी देवताहरूको हाहाकारशब्दले आकाशमण्डल नै गुञ्जायमान भयो। नागास्त्रले डढेका प्रद्युम्न मूर्च्छित भई पृथ्वीमा लडे र गरुडको पखेटको हावाले सचेत पनि भए। दुर्धर्ष नागास्त्र पनि गरुडको सम्पर्कबाट पीडित भै छिटै टुक्रा टुक्रा भई पृथ्वीमा खस्यो ॥२४-३०॥

त्यसपछि त्यस पुण्य समयमा तुरुन्त प्रद्युम्नका अगाडि आएर देवर्षि नारदले भन्न लागे ॥३१॥

हे जनार्दनपुत्र प्रद्युम्न ! पहिले नै मैले निवेदन गरेको ब्रह्माजीको वचनलाई सम्झनुहोस्। हे वीरशिरोमणि प्रद्युम्न ! विह्वल न हुनुहोस्। तपाईं पाँच हजार वर्षसम्म जलमा मधुकैटभसँग बाहुयुद्ध गर्नुहुने भगवान् विष्णुका सुपुत्र हुनुहुन्छ ॥३२॥ तपाईंका लागि शत्रुविजयको निम्ति शस्त्रको अपेक्षा छैन, त्यस दैत्यको टाउकोमा जोडले मुक्का हान्नुहोस्। नारदजीको यो वचन सुनी अत्यन्त वेगले दौडेर गई प्रद्युम्न झटपट मुठ्ठी कसेर त्यस दैत्यको शिरमा मुक्का हान्नुभयो ॥३३-३४॥ त्यसपछि मुख तथा आँखाबाट रगतको धारा वमन गर्दै, पृथ्वीलाई नै कम्पायमान तुल्याउँदै दैत्यराज महेन्द्रदमन सदाका लागि धराशायी भए। शत्रुहरूलाई रातदिन सताउने, पीडा दिने दैत्यराज महेन्द्रदमनको निधन हुनेबित्तिकै सुप्रभाभवनमा बस्ने सम्पूर्ण दैत्यहरू सबै पातालमा पुगे। त्यस समयमा आकाशमण्डलबाट प्रद्युम्नको शिरमा विभिन्न किसिमका अनेकौं फूलहरूको वृष्टि भयो र चारैतिरबाट एकैपल्ट देवता, सिद्ध, चारण र गन्धर्व आदिबाट बजाइएका दुन्दुभिहरू बज्न लागे ॥३५-३७॥

यसरी श्रीवाग्वतीको प्रशंसामा प्रद्युम्नविजयखण्डमा महेन्द्रदमनको मरणनामक तेहौं अध्याय सकियो।

# अथ चतुर्दशोऽध्यायः

वाग्वतीकृता भगवत्स्तुतिः प्रद्युम्नचन्द्रावतीपरिणयश्च

(वाग्वतीद्वारा गरिएको भगवत्स्तुति एवं प्रद्युम्न र चन्द्रावतीको परिणय)

पुलस्त्य उवाच

ततस्तस्मिन् क्षणे पुण्ये वाग्वती कामरूपिणी। अब्रवीदीदृशं वाक्यं कृताञ्जलिपुटा सती ॥१॥
विष्णुः कृष्णो हृषीकेशश्चक्रपाणिश्चतुर्भुजः। उपेन्द्रः शार्ङ्गधन्वा च भद्रकीर्तिरधोक्षजः ॥२॥
केशवो रुक्मिणीनाथो माधवो मधुसूदनः। सत्यभामापतिश्चैव द्वारकापुरसुप्रियः ॥३॥
मित्रवृन्दाधिपश्चैव जाम्बवत्यधिपस्तथा। कंसासुररिपुश्चैव रोहिणीपतिरेव च ॥४॥
नमोऽस्तु लक्ष्मीपतये धरणीपतये नमः। महामत्स्यवपुर्धृत्वा श्रुतिर्नाथ त्वयोद्धृता ॥५॥
घोरकूर्मवपुर्धृत्वा मन्दरो विधृतस्त्वया। वराहरूपमास्थाय त्वयैव धरणी धृता ॥६॥
नारसिंहवपुर्धृत्वा प्रह्लादः पालितस्त्वया। वामनं वपुरास्थाय महेन्द्रो रक्षितस्त्वया ॥७॥
कार्तवीर्योऽपि निहतस्त्वया भार्गवछद्मना। निहन्ता रावणस्यापि त्वमेव रघुपुङ्गवः ॥८॥
त्राता त्राणार्थिनां चैव दाता चापि सुखस्य च। स्थिति कर्ताऽसि लोकानां त्वमेव परिकीर्तितः ॥९॥
समर्थश्च हृषीकेशः सेतुबन्धविदारणे। गङ्गां द्रष्टुं ममेच्छास्ति त्वत्प्रसादाज्जनार्दन ॥१०॥
वाग्वत्या वचनं श्रुत्वा हर्षोत्फुल्लविलोचनः। सेतुं विदारयामास निरुद्धं भगवान् हरिः ॥११॥
सेतुबन्धे प्रभिन्ने तु विष्णुना प्रभविष्णुना। ददर्श सहसा घोरं विराधं कच्छपासुरम् ॥१२॥

---

पुलस्त्य भन्दछन् – दानव महेन्द्रदमनको वध भइसकेपछित्यो पुण्यमय शुभमुहूर्तमा इच्छानुकूल रूप धारण गर्नुहुने श्रीवाग्वती देवीले दुई हात जोडी भगवान्‌को प्रार्थना गर्न लागिन्। सर्वव्यापक, विष्णु, कृष्ण, हृषीकेश, चक्रपाणि, चतुर्भुज, उपेन्द्र, हातमा शार्ङ्गनामक धनु धारण गर्नुहुने भद्रकीर्ति, सुयशसम्पन्न, अधोक्षज, केशव, रुक्मिणीपति, माधव, मधुसूदन, सत्यभामारमण, द्वारकाप्रिय, मित्रवृन्दाधिपति, जाम्बवतीकान्त, कंसासुररिपु, रोहिणीपति भगवान्‌लाई नमस्कार गर्दछु। लक्ष्मीपति, धरणीपति हे नाथ! महामत्स्यको रूप धारण गरी हजुरले नै वेदको उद्धार गर्नुभयो ॥१-५॥

डरलाग्दो कूर्मको शरीर लिएर हजुरले मन्दराचल पर्वतलाई धारण गर्नुभयो, वराहको रूप धारण गरेर हजुरले नै पहिले पृथ्वीलाई पातालबाट माथि ल्याउनुभयो। फेरि हजुरले नै नरसिंहको स्वरूप धारण गरेर भक्तराज प्रह्लादको रक्षा गर्नुभयो। यसरी नै वामनको रूप धारण गरी देवराज इन्द्रको रक्षा गर्नुभयो। यस्तै परशुरामको स्वरूप धारण गरी हजुरले नै सहस्रबाहुको संहार गर्नुभयो। पछि रघुवंशमा उत्पन्न भएर रावणलाई मार्ने पनि हजुर नै हुनुहुनेछ। शरणमा आएकालाई रक्षा गर्नुहुने, भक्तलाई सुख दिने, सम्पूर्ण लोकहरूको मर्यादा, रीतिस्थिति बाँध्ने भनेर पनि सम्पूर्ण श्रुतिस्मृतिमा हजुरकै बयान गरिएको छ। अतः सम्पूर्ण इन्द्रियहरूका नियन्ता हजुर नै यस महेन्द्रदमनद्वारा थुनिएको चन्दनागिरिमालाको सेतुबन्ध तोड्न पनि समर्थ हुनुहुन्छ। हे प्रभु जनार्दन! हजुरको कृपाबाट मलाई गङ्गाजीको दर्शन गर्ने ठूलो रहर छ ॥६-१०॥

यस्तो वाग्वतीको प्रार्थनावचन सुनी हर्षले प्रफुल्ल नयन हुनुभएका भगवान् हरिले वाग्वतीलाई रोक्ने सेतु फोरिदिनुभयो। सर्वशक्तिमान् भगवान् विष्णुबाट बाँध तोडिएपछि छिट्टै डरलाग्दो कछुवा बनेर रहेको विराध राक्षसलाई देखेर नारदले छिटै नै प्रद्युम्नसँग भने – हे वीरशिरोमणि! दानवाधम दुरात्मा विराधलाई उठाएर मारी त्यसको पेटमा रहेको रत्न लिनु नै अहिलेका लागि कल्याणकारी कार्य हुनेछ र त्यस कार्यका लागि हजुर योग्य पनि हुनुहुन्छ ॥११-१२॥

नारदो भगवान् शीघ्रं प्रद्युम्नमिदमब्रवीत्। कृतोत्थानं दुरात्मानं विराधं दानवाधमम् ॥१३॥
हत्वा कुक्षिगतं रत्नं शीघ्रमाहर्तुमर्हसि। महर्षेर्वचनं श्रुत्वा खड्गाग्रप्रहतान्तरात् ॥१४॥
आददे स महारत्नं प्रद्युम्नो लघुविक्रमः। परिवृत्य पुनः शीघ्रं सङ्क्रुद्धः कच्छपासुरः ॥१५॥
प्रद्युम्नं त्रासयामास नर्दमानः पुनः पुनः। अत्यक्तजीवितं दृष्ट्वा संक्रुद्धं कच्छपासुरम् ॥१६॥
अब्रवीदीदृशं वाक्यं नारदो मुनिसत्तमः। दैत्यानां दानवानां च प्रसादाच्छूलपाणिनः ॥१७॥
वाग्वतीजलसंश्लेषाद्वधस्तेषां न विद्यते। तस्माद्विक्षिप्य पक्षेण जलात्पन्नगविद्विषा ॥१८॥
पातनीयं शिरश्छित्वा चक्रेण मकरध्वज। महर्षेर्वचनं श्रुत्वा तरुणादित्यवर्चसा ॥१९॥
शिरश्चिच्छेद कूर्मस्य पितुश्चक्रेण कैशविः। विराधं निहतं दृष्ट्वा प्रद्युम्नेन महात्मना ॥२०॥
ववृषुः कुसुमं देवा विस्मयाकुलमानसाः। ततश्चन्द्रावतीं गृह्य वाग्वती सरिदुत्तमा ॥२१॥
विस्मयोत्फुल्लनयनं प्रद्युम्नमिदमब्रवीत्। विश्वासार्थं त्वया वीर मद्धस्ते प्रतिपादिताम् ॥२२॥
इमां चन्द्रावतीं देवीं गृहाण मकरध्वज। इत्युक्त्वा वाग्वती देवी गता सञ्जातविस्मया ॥२३॥
बभूव सन्ध्यासमयः कुङ्कुमारुणवारिदः। तमसा पूरिते व्योम्नि ज्योत्नानिकरसंवृतः ॥२४॥
तदुत्सवादिवोद्भूतो रराज रजनीकरः। वधूं चन्द्रावतीं दृष्ट्वा चन्द्रलेखामिवाऽपराम् ॥२५॥
तुतोष भगवान् विष्णुर्विस्मयोत्फुल्ललोचनः। देवी चन्द्रावती चाऽपि विशेषकृतभूषणा ॥२६॥
रराज राजलक्ष्मीवत् प्रद्युम्ने समुपस्थिता। जामातरं समासाद्य प्रद्युम्नं रूपिणां वरम् ॥२७॥
तुतोषाऽतिशयं श्रीमान् सूर्यकेतुर्नराधिपः। देवीं चन्द्रावतीं चापि प्रद्युम्नं च महाबलम् ॥२८॥
दृष्ट्वा तुतोष सहितौ नारदो भगवान् मुनिः। तस्मिन्नवसरे पुण्ये वर्तमाने महोत्सवे ॥२९॥
देवदुन्दुभिनिर्घोषैः पूरितानेकदिङ्मुखे। अप्सरोभिरनेकाभि रचितानेकमङ्गले ॥३०॥
विवाहं वर्तयामास चन्द्रवत्या जनार्दनः। माल्याम्बरैर्विचित्रैश्च चित्रैराभरणैस्तथा ॥३१॥

---

महर्षि नारदको यो वचन सुन्नासाथ फुर्तिला र पराक्रमी प्रद्युम्नले तरबारद्वारा त्यस दैत्यको छाती चिरेर सो महारत्न झिक्नुभयो। त्यसपछि तुरुन्तै फर्किएर अत्यन्त क्रुद्ध भएको कच्छपासुरले बारबार गर्जना गरी प्रद्युम्नलाई त्रास देखाउन लाग्यो। मर्नुको सट्टा झन् क्रोधित भई त्रास देखाउन लागेको कच्छपासुरलाई देखेर नारदले भन्न लागे – हे प्रद्युम्न ! हातमा सदा सर्वदा त्रिशूल धारण गर्नुहुने भगवान् महादेवको प्रसादबाट यी दैत्यहरूको वाग्वतीका साथ सम्बन्ध रहँदासम्म यिनीहरूको मृत्यु हुँदैन। यसैले हे प्रद्युम्न ! गरुडको प्वाँखद्वारा यसलाई जलबाट बाहिर निकाली चक्रद्वारा शिर छेदन गराउनुहोस् ॥१३–१८॥

हे मकरध्वज ! हे प्रद्युम्न ! चक्रद्वारा यस राक्षसको शिरछेदन गरी गिराइदिनु नै उचित छ। यसरी देवर्षि नारदको यो प्रेरणाप्रद वचन पाएर बालसूर्यको जस्तो तेज भएको आफ्ना पूज्य पिताजी भगवान् श्रीकृष्णको चक्रद्वारा प्रद्युम्नले त्यस कच्छपासुरको शिर छुट्याइदिनुभयो। महात्मा प्रद्युम्नद्वारा यसरी विराध मरेको देखी आश्चर्यचकित भएका देवताहरूले आकाशबाट पुष्पवृष्टि गरे। त्यसपछि राजकुमारी चन्द्रावतीलाई साथमा लिई नदीश्रेष्ठ वाग्वतीले भन्न लागिन् ॥१९–२१॥

वाग्वतीले भनिन् – आश्चर्यले प्रफुल्ल नयन हुनुभएका प्रद्युम्नसँग हे वीर कामदेव ! विश्वासपूर्वक तपाईंले मेरो हातमा सुम्पिनुभएकी यी राजकुमारी चन्द्रावतीलाई स्वीकार गर्नुहोस्। यति आज्ञा गरेर विलक्षण स्वभावकी वाग्वती देवी अन्तर्धान हुनुभयो। यसैबीचमा सन्ध्यासमय भयो र सन्ध्याकालीन मेघ कुंकुम धूप जस्तै लाल वर्णवाला भए। अन्धकारपूर्ण आकाश मण्डलमा मानौं चन्द्रावतीको विवाहोत्सव हेर्नका लागि कान्तिले ढकमक्क भएका चन्द्रमा उदाए। दोस्रो चन्द्रमाको कलाजस्ती बुहारी चन्द्रावतीलाई देखी विस्मयले प्रफुल्ल नेत्र हुनुभएका भगवान् विष्णु अत्यन्त सन्तुष्ट हुनुभयो ॥२२–२५½॥

यता विशेष रूपले सिंगारपटार गरी सजिसजाउ भएकी देवी चन्द्रावती सुहाइन्। चन्द्रावती आफ्ना प्रियतम प्रद्युम्नका अगाडि उपस्थित भएर राजलक्ष्मीसमान भइन्। यस्तै सुन्दर पुरुषहरूमा श्रेष्ठ प्रद्युम्नलाई ज्वाईंका रूपमा प्राप्त गरी राजा सूर्यकेतु सन्तुष्ट भए। यसैगरी बलवान्, रुक्मिणीका छोरा प्रद्युम्नलाई पतिका रूपमा पाई चन्द्रावती देवी पनि अत्यन्त सन्तृप्त र सन्तुष्ट भइन् ॥२६–२८॥

महोत्सव भइरहेको शुभमुहूर्तमा देवी चन्द्रावती र महाबली प्रद्युम्नलाई एकसाथ देखेर नारदमुनि पनि अत्यन्त सन्तुष्ट हुनुभयो। यसरी नै हर्षविभोर बनी देवताहरूले दशौं दिशामा आ–आफ्ना दमाहाका शब्द तरङ्गद्वारा आनन्द र उल्लासको वातावरण सिर्जना गरिरहेका थिए। यसका अतिरिक्त अनेकौं अप्सराहरूले मङ्गलका सरसामानहरूको रचना गरिरहेका थिए। यसै मङ्गलमय शुभ मुहूर्तमा भगवान् श्रीकृष्णले आफ्ना छोरा प्रद्युम्नका साथ चन्द्रावतीको विवाह महोत्सव सुसम्पन्न तुल्याउनुभयो ॥२९–३१॥

पूजयामास देवेन्द्रः सपुत्रं मधुसूदनम्। वाग्वती च सरिच्छ्रेष्टा विस्मयोद्धतमानसा ॥३२॥
पूजयामास विधिना सपुत्रं मधुविद्विषम्। ननर्ताऽप्सरसां वृन्दं नूपुरध्वनिभिस्तदा ॥३३॥
गन्धर्वाः प्रजगुर्गीतं वीणावेणुप्रवादिनः। प्रववावनिलश्चापि विस्मयाज्जलशीतलः ॥३४॥
नानाद्रुमलताग्रेभ्यो वर्षन्ती पुष्पसञ्चयम्। चकम्पे धरणी चापि पीवराद्रिपयोधरा ॥३५॥
चन्द्रावत्या विवाहेन विस्मयाकुलमानसः। ततः सुरेन्द्रसम्मानश्चित्रस्रग्दामभूषणः ॥३६॥
दंष्ट्रारत्नश्रिया युक्त इन्द्रनीलसमप्रभः। शङ्खचक्रगदापाणिर्देवगन्धर्वपूजितः ॥३७॥
मुनिभिर्वेदशब्देन संस्तुतो लोकहर्षणः। आरुरोह गरुत्मन्तं भगवान् मधुसूदनः ॥३८॥
देवीं चन्द्रावतीं चापि राजपुत्रीं प्रभावतीम् ॥३९॥
रथमारोपयामास कामगं हेमनिर्मितम्। स्त्रीरत्नाद्यैश्च रत्नौघैः पूरितं रथमुत्तमम् ॥४०॥
उत्पपात तदाकाशं शक्रनीलसमप्रभः। स पुत्रो भगवान् विष्णुः प्रहर्षाकुलितेक्षणः ॥४१॥
विलोक्य धरणीं पुण्यां वाग्वतीं जलशोभिनीम्। प्रहृष्टो भगवान् विष्णुरिदं वचनमब्रवीत् ॥४२॥
त्वद्विवाहं समालोक्य सूर्यकेतुर्नराधिपः। समानुषेण देहेन प्रागाच्छक्रपुरं शुभम् ॥४३॥
पश्य दक्षिणभागेन मृगशृङ्गस्य भूभृतः। चन्द्रदीप्तितटे पुण्ये स्थानं मम भविष्यति ॥४४॥
सिंहवक्त्रवपुर्भूत्वा तत्र स्थास्यामि कारणात्। पूजयिष्यन्ति लोकाश्च मम भक्तिपरायणाः ॥४५॥
इन्द्रेश्वरं प्रतिष्ठाप्य चेन्द्रनद्याः शुभे तटे। आगच्छद् भगवानिन्द्रो यज्ञकार्यपरोऽभवत् ॥४६॥
मम भक्तिपरो धीमान् यदा यातो महीपतिः। भविष्यति ममाऽऽवासो दोलाशिखरमूर्धनि ॥४७॥
शिखरस्वामिनञ्चैवं कीर्तयिष्यन्ति भूतले। पूजयिष्यन्ति लोकाश्च तत्र व्यक्तं वृषध्वजम् ॥४८॥
ब्राह्मणा बहवो यत्र सन्ति स्वाध्यायशीलिनः। तत्राऽप्यवतरिष्यामि सन्ध्याकाले विशेषतः ॥४९॥

---

यसै बीच देवराज इन्द्रले पनि अनेकौं रङ्गी विरङ्गी माला वस्त्र र सुन्दर सुन्दर गहनाहरूद्वारा भगवान् श्रीकृष्णको पूजा गर्नुभयो। जसरी छोरासहित भगवान् मधुसूदनको इन्द्रले पूजा गरे, त्यसरी नै उत्तम नदी वाग्वतीले पनि विधिपूर्वक पुत्रसहित गरुडध्वज नारायणको पूजा गरिन्। त्यस अवस्थामा छं छं नूपुरको शब्द निकाल्दै अप्सराका समूह नाच्न लागे र गन्धर्वहरू वीणा, वंशी आदि बजाउँदै गाउन थाले। त्यस समयमा मन्द एवं सुगन्धयुक्त शीतल हावा चल्न लाग्यो। नानाप्रकारका वृक्ष, लता र गुच्छाहरूका हाँगाबाट पुष्पवृष्टि गर्दै पर्वतरूपी पीन पयोधरले सुहाउनुभएकी पृथ्वीमाता पनि आनन्दविभोर भै मन्द मन्द रूपबाट हर्षनृत्यमा सामेल हुनुभयो ॥३२-३५॥

राजकुमारी श्रीचन्द्रावतीसँग विवाहोत्सव सम्पन्न भएका कारण प्रसन्न चित्त हुनुभएका, त्यसमाथि पनि महाराज इन्द्रको सम्मानसूचक विचित्र मालाहरूले अलंकृत दंष्ट्ररत्नको पुनः प्राप्ति र आफ्नो दिव्य देहमा धारण गर्दा इन्द्रनीलमणिसमान नै सुन्दर देखिनुहुने, आफ्ना चार बाहुमा चार दिव्य चिह्न शङ्ख, चक्र, गदा र पद्म धारण गर्नुहुने, देवता र गन्धर्वहरूद्वारा अत्यन्त सम्मानित हुनुभएका, सारा ऋषिमुनिद्वारा वेदवाणीले स्तुति गरिनुभएका र सम्पूर्ण लोकलाई आनन्दमग्न तुल्याउनुहुने भगवान् मधुसूदन गरुडमाथि सवार हुनुभयो ॥३६-३८॥

भगवान् केशवको आज्ञाद्वारा प्रद्युम्नले पनि आफ्ना दुई धर्मपत्नीहरू प्रभावती देवी र राजकुमारी चन्द्रावतीलाई पनि आफ्नो दिव्य रथमा सवार गराए। यसपछि नारीरत्न र सम्पूर्ण रत्नहरूका समूहले पूर्ण, सर्वश्रेष्ठ एवं रथीको इच्छा अनुसार चल्ने सुवर्णमय दिव्य रथमा वीरशिरोमणि प्रद्युम्न पनि सवार भए। अनि इन्द्रनीलमणिको जस्तो कान्तिले युक्त आँखा भरिंदा विलक्षण देखिनुहुने,भगवान् विष्णुआकाश मण्डलमा उड्नुभयो। मोतीको माला जस्तो वाग्वती आदि नदीहरूका जलले सुहाएको पुण्यभूमिलाई देखी प्रसन्नमुख हुनुभएका भगवान् विष्णु आज्ञा गर्नुहुन्छ ॥३९-४२॥

हे बाबु पुत्र! तिम्रो विवाह हेरी सम्बन्धी मानवाधिपति सूर्यकेतु मनुष्यदेह नै लिई ठूला ठूला पुण्यात्माहरूले मात्र प्रवेश पाउन सकिने इन्द्रको अमरावती पुरीमा जाँदैछन्। फेरि यतातिर हेर, मृगेन्द्रशिखर पर्वतको दक्षिणपट्टि पवित्रभन्दा पनि पवित्र चन्द्रदीप्ति नदीको किनारामा मैले वास गर्नेछु। मृगेन्द्रशिखरपर्वतमा म नरसिंह भै कारणवश रहने छु। सन्तहरूले मेरो भक्तिमा तत्परभै पूजा गर्ने छन्। यता हेर, इन्द्रनदीको पुण्यदायक इन्द्रले आई इन्द्रेश्वरको स्थापना गरेर यज्ञकार्यमा संलग्न भई जीवन बिताएका थिए। मेरो भक्तिमा तल्लीन बुद्धिमान् राजा सूर्यकेतु स्वर्गतिर गएपछि यस दोलाचलको शिखरमा मेरो निवास हुनेछ। त्यहीं प्रकट हुनुभएका भगवान् वृषध्वजलाई मृगेन्द्रशिखरका स्वामी भनी पृथिवीमा दुनियाँले पूजा गर्नेछन्। जहाँ जहाँ स्वाध्यायशील ब्राह्मणहरू धेरै रहन्छन्, त्यहाँ त्यहाँ विशेष गरी सन्ध्याकालमा मैले अवतार लिनेछु ॥४३-४९॥

पश्य कर्कह्रदं तीर्थं सर्वौषधितले शुभे। वसन्ति यत्र नागेन्द्राः कर्कोटकपुरः सराः ॥५०॥
सर्वौषधिगिरेश्चैव दक्षिणे गिरिगह्वरे। तत्राऽऽपि च ममाऽवासो भविता मकरध्वज ॥५१॥
क्षेत्रपालप्रभावेण गोपितं लोकदुर्गमम्। सुगमञ्चापि तत्रैकं भविष्यति झषध्वज ॥५२॥
पश्यत्वद्धस्तनिहतं विराधं कच्छपासुरम्। कूर्मपर्वत इत्येवं कीर्तयिष्यन्ति मानवाः ॥५३॥
परितस्तस्य शैलस्य प्रभावादासुरात्तथा। सस्यवृद्धिर्विशेषण भविष्यति महीतले ॥५४॥
अत्र कूर्मगिरौ पुण्ये पुण्यकृद्भिर्निषेविते। यत्र यत्र स्रुतं तोयं तत्र तत्र फलं भवेत् ॥५५॥
तत्र कूर्मगिरेर्मूले वाग्वत्याः पश्चिमेन तु। भविष्यति शिलादन्तो गणेशो लोकपूजितः ॥५६॥
तत्रापि च महास्थानं दुर्विज्ञेयं भविष्यति। स्नानाद्वापि च वाग्वत्यां निर्विघ्नं जायते नृणाम् ॥५७॥
भिन्नसेतुतटे रम्ये पर्वते चन्दनागिरौ। विष्णुतीर्थमिति ख्यातं स्थानं मम भविष्यति ॥५८॥
मीनचक्रह्रदो पुण्ये पुरतो मम सम्भवे। द्वादश्यां स्नायते यस्तु मम लोके महीयते ॥५९॥
पतिव्रतासु नारीषु ब्राह्मणे वेदपारगे। मम क्षेत्रे च यद्दत्तं तदक्षयमिति स्मृतम् ॥६०॥
चन्दनागिरिमूलेऽपि पुण्यतीर्थं प्रकामदम्। अत्र देव्या महागौर्या चन्दनं घर्षितं पुरा ॥६१॥
सुप्रभाभवनं भग्नं नानारत्नप्रभाकरम्। हतावशेषास्त्वसुराः करिष्यन्ति निवेशनम् ॥६२॥
इत्युक्त्वा भगवान् विष्णुः शङ्खचक्रगदाधरः। विस्मयोत्फुल्लनयनं नारदं मुनिमब्रवीत् ॥६३॥
मनोजवेन निर्गत्य रम्यां द्वारावतीं पुरीम्। प्रद्युम्नविजयं शीघ्रं कथां कथय नारद ॥६४॥
वाक्यं भगवतः श्रुत्वा गत्वा द्वारवतीं मुनिः। रुक्मिण्याः पुरतः शीघ्रं कथयामास तत्कथाम् ॥६५॥

---

बाबु पुत्र प्रद्युम्न ! हेर, यो सर्वोषधिनामक तीर्थ र पर्वतको फेदीमा कर्कसरोवर छ, यहाँ कर्कोटक आदि नागराजहरू रहन्छन्। हे मकरध्वज सर्वौषधितीर्थनजिकको दक्षिणपट्टिको पर्वतको गुफामा पनि मेरो निवास हुनेछ। हे पुत्र प्रद्युम्न ! क्षेत्रपालको शक्तिद्वारा सुरक्षित तथा सम्पूर्ण लोकका निम्ति दुर्गम तर रहस्यज्ञाताका लागि सुगम एउटा स्थान हुनेछ। हे बाबु ! तिम्रो पराक्रमी बाहुद्वारा मरेको कच्छपासुर विराधलाई हेर, यसैको नामबाट सबैले यस पर्वतलाई कूर्म पर्वत भन्दछन् ॥५०-५३॥

दैत्यहरूको प्रभावले गर्दा यस पर्वतको चारैतिर रहेको जमिनमा विशेषरूपले धान्यादि सस्यसम्पदाको समृद्धि हुनेछ। पुण्यात्माहरूद्वारा सेवित यस कूर्मगिरिमा जहाँ जहाँ जलका झर्ना बग्दछन्, त्यहाँ त्यहाँ पुण्यफलदायक तीर्थ बन्नेछन्। त्यस कूर्मपर्वतको फेदीमा र वाग्वतीको पश्चिमतिरको तटमा शिलाको दाँत भएका गणेश प्रकट हुनुहुने छ र उहाँको सम्पूर्ण धर्मप्राण समाजले अर्चना, उपासना गर्नेछन्। जलविनायक तथा वाग्वती नदीको सङ्गम पनि दुर्गम तर ठूलो स्थान हुनेछ। पुण्यतोया वाग्वतीमा स्नानमात्रले पनि तीर्थसेवी पुण्यात्माहरूको आध्यात्मिक, आदिभौतिक र आधिदैविक सम्पूर्ण विघ्नहरू नाश हुनेछन्। रमणीय श्रीविष्णुको चक्रद्वारा खण्डित चन्दनागिरिको वाग्वतीको सेतु बन्ध तटसमीप विष्णुतीर्थको नामले प्रख्यात मेरो स्थान हुनेछ। यहीँनेर मेरो उत्पत्तिस्थान मीनचक्रह्रद नाम भएको पुण्यतीर्थमा द्वादशीका दिन जसले स्नान गर्दछ, त्यो व्यक्ति मेरो लोकमा अत्यन्त सम्मानित भई बस्न पाउँदछ ॥५४-५९॥

पतिव्रता साध्वी सौभाग्यवती ब्राह्मणीहरू र वेदपारङ्गत ब्राह्मणहरूलाई मेरो क्षेत्रमा जुन दान दिइन्छ, त्यो दान अक्षय हुन्छ। चन्दनागिरिको फेदीमा पनि सम्पूर्ण मनोरथ परिपूर्ण गरिदिने पुण्यतीर्थ छ, त्यहाँ नै धेरै अघि प्राचीनकालमा देवी श्रीमहागौरीजीले स्वयं चन्दन घोट्नुभएको थियो। अनेक किसिमका रत्नहरूद्वारा प्रकाशित भत्किएको सुप्रभा भवनमा पनि मरेर बाँकी रहेका दैत्यहरू बस्नेछन् ॥५७-६२॥

प्रद्युम्नसँग यति आज्ञा गर्नुभएपछि शङ्खचक्र र गदाधारी भगवान् विष्णु आश्चर्यचकितनारद मुनिसँग भन्न लाग्नुभयो – हे देवर्षि नारदजी ! तपाईं मनकै जस्तो वेग गरी श्रीद्वारावती नगरीमा जानुहोस् र छिटै नै पुत्र प्रद्युम्नको यो विजयवृत्तान्त सम्पूर्ण बताउनुहोस्। योगेश्वर भगवान् श्रीकृष्णको यो आज्ञा सुन्नेबित्तिकै नारदजीले द्वारावती शहरमा छिटै पुगी रुक्मिणीका अगाडि त्यो सम्पूर्ण विजय वृत्तान्त सुनाए ॥६३-६५॥

ततः श्रुत्वा मुनेर्वाक्यं हर्षवाष्पप्लुतेक्षणा। आहूय चेटिकाः सर्वा रुक्मिणी वाक्यमब्रवीत् ॥६६॥
सूर्यकेतोः सुतां प्राप्य प्रहृष्टं हतकण्टकम्। प्रद्युम्नमद्य द्रक्ष्यामि मृत्युद्वारात् समागतम् ॥६७॥
मङ्गलं क्रियतां तस्मात् प्रत्यागमनदर्शनात्। पुरद्वारि विशेषेण शीघ्रं सर्वाभिरेव च ॥६८॥
अथ तीर्थोदकापूर्णगृहीतकलशाः क्वचित्। दीपहस्ताः क्वचिन्नार्यः क्वचिद्धूपकराः स्थिताः ॥६९॥
चित्रमाल्याम्बरधरा विलोलायतलोचनाः। रत्नभाजनहस्ताश्च स्थिताः काश्चित्पुराङ्गनाः ॥७०॥
पुरनारीगणाः केचिद् विशेषकृतभूषणाः। सपुत्रं केशवं द्रष्टुं स्थिताः प्रासादपंक्तिषु ॥७१॥
मार्गं भगवतो द्रष्टुं चित्र स्रग्दामधारिणः। निर्ययुर्यादवाः केचित् प्रद्युम्ने जातविस्मयाः ॥७२॥
गतमात्रेण सम्प्राप्तं सपुत्रं चक्रधारिणम्। पुपूजिरे यथातथ्यं यादवा जातविस्मयाः ॥७३॥
ततः सपुत्रः पुरकामिनीकरैर्विमुक्तमन्दाररजोऽभिरञ्जितः।
जनार्दनो दानवदर्पसूदनो मनोहरां द्वारवतीं विवेश ह ॥७४॥
यस्तु वाचयते नित्यं प्रद्युम्नविजयं शुभम्। प्रणश्यति रिपुस्तस्य सङ्ग्रामे जयमाप्नुयात् ॥७५॥
सर्वकार्येषु सिद्धिञ्च सुखं प्राप्नोति दुर्लभम्। सौभाग्यरूपसम्पत्तिर्भविष्यति महातपाः ॥७६॥

इति श्रीवाग्वतीप्रशंसायां रुक्मिण्यानन्दनो नाम चतुर्दशोऽध्यायः।

---

त्यसपछि मुनि नारदजीको कुरा सुनेर हर्षाश्रुपूरित नयन भएकी रुक्मिणीले सम्पूर्ण दासीहरूलाई बोलाएर भन्नुभयो। राजा सूर्यकेतुकी पुत्रीलाई मेरी बुहारीका रूपमा पाएर प्रसन्न भएका र लोककण्टक महेन्द्रदमनलाई समाप्त गरी मानौँ मृत्युकै मुखबाट बाँची फर्केर आएका पुत्र प्रद्युम्नलाई आज मैले देख्नेछु। यसकारण प्रत्यागमनको अवसरमा सबै मिली मङ्गल गर, विशेष सजिसजाउका साथ द्वारकापुरीको द्वारमा मङ्गलसामग्री जुटाउने काम गर ॥६६–६८॥

रुक्मिणीको आज्ञाद्वारा कतै कुनै सखीहरू तीर्थोदकले भरिएका कलश लिएर खडा भए, कतै कुनै हातमा बत्ती लिएर उभिए, कोही कतै धूप लिएर उभिए, कतै कोही चित्रविचित्र माला लगाई अनेक दिव्य वस्त्र र गहनाहरूले अलङ्कृत भएका र चञ्चल एवं विशाललोचन भएका पुरस्त्रीहरू आ–आफ्ना हातमा सुन्दर रत्नपात्रहरू लिई खडा भए, कतै नगरनिवासीहरू विशेषरूपले वस्त्राभूषणद्वारा सजिएर पुत्र प्रद्युम्नसहित केशवको दर्शन गर्नका लागि राजदरबार जाने बाटोमा पंक्तिबद्ध भएर उभिए ॥६९–७१॥

भगवान् आउने बाटो हेर्नका निम्ति चित्रविचित्रका माला लगाई कुनै कुनै यदुवंशी प्रद्युम्नको अद्भुत पराक्रमका विषयमा आश्चर्यचकित भएर आआफ्ना घरबाट निस्किए। यसरी यादवहरू निस्कनेबित्तिकै छोरा बुहारी आदिलाई साथलिई आउनुहुने चक्रपाणि भगवान् विष्णुको दर्शन गरी विधिपूर्वक आश्चर्यचकित भएका यादवहरूले पूजा गरे ॥७२–७३॥

त्यसपछि दानवहरूको दर्पलाई चूर्ण पारिदिनुहुने र पुरवासी नारीहरूका हातबाट समर्पण गरिएको पारिजातका फूलको सुगन्धले रंगमगिनु हुने भगवान् जनार्दन श्रीकृष्णले आफ्नो सुन्दर द्वारवती पुरीमा प्रवेश गर्नुभयो ॥७४॥

जसले यो प्रद्युम्नविजयको शुभ कथा नित्य पारायण गर्दछ या गराउँदछ, त्यसका सबै शत्रु नष्ट हुन्छन् र सङ्ग्राममा उसले जयलाभ गर्दछ र जीवनमा पन सफल हुन्छ। त्यस साधकले सम्पूर्ण कार्यहरूमा सिद्धिलाभ गर्नुका साथै सौभाग्य,रूप र सम्पत्तिले पनि सम्पन्न बन्दछ। अनि त्यो संसारमा ठूलो तपस्वीका रूपमा विख्यात हुनेछ ॥७५–७६॥

यसरी श्रीवागवतीप्रशंसामा रुक्मिणीको आनन्दनामको चौधौँ अध्याय सकियो।

# अथ पञ्चदशोऽध्यायः

श्लेष्मान्तकवनसौन्दर्यं नागराजश्लेष्मान्तककृता शिवाराधना च

(श्लेष्मान्तकवनको सौन्दर्य र नागराज श्लेष्मान्तकले गरेको शिवाराधना)

प्रणम्य शिरसा भक्त्या पशूनां पतिमव्ययम्। पुराणं सम्प्रवक्ष्यामि मुनिभिः पूर्ववर्णितम् ॥१॥
शृङ्गे क्षितिधरेन्द्रस्य मेरो रत्नमये शुभे। वज्रवैदूर्यपाषाणे प्रबालाङ्कुरकर्कशे ॥२॥
मुक्ताफलनिभैस्तोयैः स्रवद्भिः प्रविराजते। अप्सरोगणसङ्कीर्णे किन्नरामरसेविते ॥३॥
मकरन्दमदोन्मत्तभृङ्गनादविनादिते। पुष्पप्रकरसङ्कीर्णे तडागोद्यानशोभिते ॥४॥
तत्रासीनः स्वयं श्रीमान् कुमारः सनकाह्वयः। जगदाह्लादनो नित्यं वाक्येन वपुषापि च ॥५॥
दिव्यवल्कलसंवीतो जटामुकुटभूषणः। नीलाब्जपत्रनयनः पद्मोदरसमच्छविः ॥६॥
मुनिभिर्देवपुत्रैश्च पुराणश्रवणार्थिभिः। पृच्छ्यमानो विवेकेन भगवानिदमब्रवीत् ॥७॥

सनत्कुमार उवाच

पादे हिमवतः पुण्ये रम्ये सिद्धर्षिसेविते। किंशुकाशोकबकुलैः पुष्पितैः सुविराजिते ॥८॥
हिन्तालतालतिलकैरर्जुनैश्चोपशोभिते। नक्तमालकदम्बाद्यैस्तिन्दुकाद्यैः समाकुले ॥९॥
बिल्वाग्निमन्थशोणाकसर्जशिंशपसंकुले। चूतचम्पकपुन्नागपारिभद्रैश्च दीपिते ॥१०॥
छायाद्रुमैर्महद्भिश्च प्लक्षाद्यैरुपशोभिते। लताभिः फुल्लपुष्पाभिर्विविधाभिर्विराजिते ॥११॥
नृत्यगीतैर्मयूरैश्च कूजद्भिश्चापि कोकिलैः। भ्रमद्भिर्भ्रमरैश्चापि समन्तादुपशोभिते ॥१२॥
दात्यूहैश्च चकोरैश्च कपिञ्जलकुलैस्तथा। वराहयूथैर्विक्रान्तैर्मृगयूथैश्च संश्रिते ॥१३॥
कपिशार्दूलगवयगजगण्डकसेविते। एवंविधेऽतिरुचिरे वने सिद्धाद्रिसंज्ञिते ॥१४॥
श्लेष्मान्तक इति ख्यातो नागेन्द्रो नागिनीप्रियः। सम्यगाराधयामास भगवन्तं महेश्वरम् ॥१५॥

---

अविनाशी भगवान् पशुपतिनाथलाई भक्तिपूर्वक नमस्कार गरी मुनिहरूद्वारा परापूर्वकालमा वर्णन गरिएको पुराणको कथा भन्दछु। वज्रमणि र वैदूर्यमणिमय पाषाण भएको, प्रवालमणिको आँकुरोसमान कर्कश र मोतीको दानाजस्तै निर्मल जलका झर्नाहरूले सुहाएको, अनेकौं अप्सराहरूले खचिखचाउ भएको, किन्नरगण, देवगण आदिले सेवा गरिएको, फूलहरूको सुगन्धद्वारा मत्त भएका भमराहरूको भूँ भूँ शब्दले गुञ्जायमान भएको, अनेक प्रकारका फूलहरूले ढाकिएको, अनेकौं सुन्दर सुन्दर तलाउ र सुन्दर बगैंचाहरूले परिपूर्ण भएको, अत्यन्त सुषमामय कुलाचल पर्वतका अधिराज सुमेरुको रत्नमय रमणीय शिखरमा बस्नुहुने स्वयं शोभायुक्त वचन तथा शरीरद्वारा सदा सर्वदा संसारलाई आनन्द दिनुहुने सनत्कुमार हुनुहुन्छ ॥२-५॥

दिव्य वल्कल वस्त्रहरूद्वारा विशेष शोभायमान, सुन्दर नीलकमलकै तुल्य नयनले सुहाउनुभएका, रातो कमलको भित्री भाग जस्तै शोभामय सनत्कुमारले पुराण श्रवण गर्न अत्यन्त जिज्ञासु ऋषि तथा देवपुत्रहरूले प्रश्न गरेपछि भन्नुभयो ॥६-७॥

सत्कुमार आज्ञा गर्नुहुन्छ – पृथ्वीमण्डलका सम्पूर्ण पर्वतहरूका अधिराज हिमालयको पुण्यमय अत्यन्त सुन्दर ऋषिमुनि एवं सिद्धयोगीद्वारा नित्यसेवित, प्रत्यन्तपर्वतमा फुलेका पलास, अशोक, मूल मै सुगन्ध आउने अरू अनेकौं रुखहरूले अत्यन्त रमणीय नक्तमाल, कन्द र तिन्दुक आदिका वृक्षहरूले व्याप्त भएको वेल, शमी, शोनाक, साल र सिसौ आदिका वृक्षद्वारा ढकमक्क भएको, आँप, चाँप, चिलाउने र नीम आदि श्रेष्ठ वृक्षहरूको सुगन्धद्वारा वरिपरिको वातावरण नै उद्दीपनपूर्ण भइरहेको श्लेष्मान्तक रहेको छ ॥८-१०॥

छाया र शीतलता दिने पाखरी र वरपिपल आदि वृक्षले सुहाएको, प्रफुल्ल पुष्प भएका अनेकौं लहराहरूद्वारा अत्यन्त रमणीय देखिने, मयूरका नाचहरूले र को हो ? को हो ? शब्द गर्दै वनै गुञ्जायमान गराउने कोइलीहरूले एवं भुँ भुँ शब्द गर्दै फूलमा घुमिरहने भमराहरूद्वारा चारैतिर शोभायमान, चखेवा, कपिञ्जल आदि पक्षीसमूहले व्याप्त,ठूलो पराक्रम भएका वनेलका वथानहरूद्वारा र नानाथरी हरिणीको वथानद्वारा आश्रय लिइएको, यसरी नै वानर, सिंह, गवय, नीला काला रङ्गका गाई र गौरीगाईहरूले व्याप्त भएको, साथै हात्ती, गैंडा आदि वन्यजन्तु र चौपाया अरू साधारण जन्तुहरूद्वारा सेवा गरिएको अत्यन्त सुन्दर सिद्ध योगीराजहरूको निरन्तर निवासले गर्दा सिद्धपर्वत, सिद्धाचल आदि नामले प्रख्यात भएको वनमा नागिनीप्रिय प्रख्यात नागराज श्लेष्मान्तकले भगवान् महेश्वरको दीर्घकालिक आराधना गरे ॥११-१५॥

ततः कालेन महता देव्या सह समागतः। प्रहृष्टो भगवान् शम्भुरिदं वचनमब्रवीत् ॥१६॥
सुरासुरैरवध्यश्च नित्यं मत्प्रियकारकः। भविष्यसि भुजङ्गेन्द्र स्वच्छन्दगतिरेव च ॥१७॥
इदं वनवरं पुण्यं पुण्यकृद्भिर्निषेवितम्। भविष्यसि जगत्ख्यातं तव नाम्ना भुजङ्गम ॥१८॥
एवं संभाष्य नागेन्द्रं विस्मयोत्फुल्ललोचनम्। निरीक्ष्य देवीं पार्श्वस्थां भगवानिदमब्रवीत् ॥१९॥
चन्द्रभागातटे देवि पश्य चन्द्रसमुज्ज्वलाम्। पश्य भगवतीं चापिवाराहीं च सरिद्वराम् ॥२०॥
ज्येष्ठिलां च नदीं पुण्यां पुण्यां शोकवतीं तथा। पश्य तीर्थान्यनेकानि मत्प्रभावगतानि च ॥२१॥
श्यामाकशिखरं पश्य चम्पकद्रुमसङ्कुलम्। मृगकूटमिमं पुण्यं मृगयूथसमाकुलम् ॥२२॥
भृङ्गेश्वरमिमं पश्य मद्वपुर्लोकपूजितम्। देवैर्भ्रमररूपाद्यैः सेवितं सर्वपर्वसु ॥२३॥
मृगयूथं समाविश्य रम्ये वनवरे शुभे। मृगरूपं समास्थाय चरिष्यामि सुलोचने ॥२४॥
यदा मद्दर्शनोद्युक्ता ब्रह्मविष्णुपुरन्दराः। पृच्छन्ति यदि मद्रूपं कथ्यतां सुरसुन्दरि ॥२५॥
एवं सम्भाष्य भगवान् देवीं देवेन्द्रपूजितः। चचार विपिने रम्ये हरो हरिणरूपधृक् ॥२६॥

इति श्रीपशुपतिपुराणे श्लेष्मान्तकवनावतरणं नाम पञ्चदशोऽध्यायः।

---

नागराजको दीर्घकालिक आराधनाबाट प्रसन्न भएर आफ्नी प्रियतमा शक्ति श्रीगौरीजीका साथ आउनुभई भगवान् शिवले आज्ञा गर्नुभयो –हे भुजगेन्द्र ! हे नागराज ! तिमी नित्य निरन्तर नै मेरो प्रियकार्य गर्नेछौ। त्यसकारण देव, दैत्य आदिद्वारा मार्न नसकिने र स्वच्छन्द गतिले आफ्नो इच्छाले जहाँ पनि जान सक्ने हुनेछौ ॥१६–१७॥

हे भुजङ्गम ! हे नागराज ! यो पुण्यमय वन पुण्यात्मा साधुसन्तद्वारा सेवितभएर तिम्रो श्लेष्मान्तक नामले जगत्मा प्रख्यात हुनेछ। आश्चर्यले प्रफुल्लनेत्र भएका श्लेष्मान्तक सर्पराजलाई यसरी आज्ञा दिएर आफ्नो नजिकमा रहनुहुने देवी पार्वतीतर्फ नजर लगाउँदै भगवान् शङ्करले आज्ञा गर्नुभयो – हे देवी कल्याणी पार्वती ! चन्द्रभागा नदीको किनारामा चन्द्रमाझैँ चहकिलो रूप भएकी भगवती वाराहीको दर्शन गर, यस्तै नदीश्रेष्ठ श्रीवाराहीको पनि दर्शन गर। यसरी नै पुण्यनदी ज्येष्ठिला, पवित्रतम नदी शोकवती र मेरो प्रभावद्वारा प्रकट भएका अनेकौं तीर्थहरूको पनि दर्शन गर ॥१८–२१॥

चाँपका सुन्दर वृक्षहरूले परिपूर्ण भएको श्यामाक पर्वतको शिखरलाई हेर, अनेक जातका मृगहरूले व्याप्त भएको पुण्य मृगकूटको पनि दर्शन गर। यस्तै अर्कातिर श्री भृङ्गेश्वरको पनि दर्शन गर, यो सम्पूर्ण लोकले पूजा गरिएको मेरो नै शरीर हो। भमराको रूपलिने देवताहरू पर्वपर्वमा आउँछन् र यस मूर्तिको सेवा अर्चना आदि गर्दछन् ॥२२–२३॥

हे सुन्दर नयन भएकी पार्वती ! म मृगको रूप लिई मृगको वथानमा पसेर मृगस्थलीको रमणीय वन प्रदेशमा विचरण गर्नेछु। जब मेरो दर्शनका लागि प्रयासरत ब्रह्मा, विष्णु र इन्द्रले प्रश्न गर्दा हे सुरसुन्दरी ! यो मेरो स्वरूपबताउने छौ। ठूला ठूला इन्द्रादि देवताहरूद्वारा पनि पूजित भगवान् शिवले यसरी आफ्नी प्रियतमा देवी गौरीलाई सम्झाएर मृगरूप धारण गरी मृगस्थलीमा घुम्न लाग्नुभयो ॥२५–२६॥

यसरी श्रीपशुपतिपुराणमा श्लेष्मान्तक वनामा अवतरण नामक पन्ध्रौं अध्याय सकियो।

# अथ षोडशोऽध्यायः

शिवस्य मृगस्थल्यां गुप्तवासो देवैः कृतमन्वेषणं प्रार्थना च

(शिवको मृगस्थलीमा गुप्तवास र देवताहरूद्वारा उहाँको खोजी र प्रार्थना)

सनत्कुमार उवाच

एतस्मिन्नन्तरे काले भगवान् पाकशासनः। विष्णुना सहितो गत्वा ब्रह्माणमिदमब्रवीत् ॥१॥
भगवन् पद्मगर्भाभः पद्मयोनिरयोनिजः। त्रातुमर्हसि मां नाथ दुःखाच्छम्भोरदर्शनात् ॥२॥
शम्भुं विना न लोकस्य कार्यं पद्मज शोभते। शम्भुं लोकस्य गोप्तारं न पश्याम्यधुना विभो ॥३॥

---

सनत्कुमार आज्ञा गर्नुहुन्छ – भगवान् श्रीशिवले मृगको रूप लिई विचरण गर्न लाग्नु भएपछि देवराज इन्द्र भगवान् श्रीविष्णुलाई समेत साथ लिएर ब्रह्माजीसमक्ष गएर भन्न लागे – हे नाथ ! हे भगवान् ! हजुर कमलको भित्री भागजस्तै कान्तिमय र कमलजन्मा हुनुहुन्छ र अयोनिजन्मा हुनुहुन्छ। यस्ता हजुरले भगवान् शिवको दर्शन नपाउँदा दुःखी भएको मेरो रक्षा गर्नुहोस्। हे ब्रह्माजी ! यसबेला तीनै लोकका रक्षक भगवान् शिवलाई मैले कतै देख्न पाइन। भगवान्को शिवको अभावमा कुनै पनि कार्य सफल र सुन्दर हुन सक्दैन ॥१–३॥

इदं रहस्यं ब्रह्मेन्द्र ज्ञास्यते यदि दानवैः। क्रियते हरणं लोभान्मम राज्यस्य निश्चयः ॥४॥
मुञ्जवन्तं गिरिं गत्वा जटामुकुटभूषणम्। महेश्वरप्रतीकाशं नन्दिनं दृष्टवानहम् ॥५॥
वचनात्तस्य ब्रह्मेन्द्र परिभ्राम्य महीतले। त्वच्छकाशमहं प्राप्तो मूढः शम्भोरदर्शनात् ॥६॥
तस्माद्योगबलेनाऽऽशु प्रविलोक्य महीतलम्। प्रसादं कुरु मे ब्रह्मन् दुःखार्तस्य शुभाशया ॥७॥
तस्य तद्वचनं श्रुत्वा ब्रह्मा लोकपितामहः। अब्रवीदीदृशं वाक्यं ध्यात्वा योगबलात्तदा ॥८॥

ब्रह्मोवाच

पादे हिमवतः पुण्ये रम्ये सिद्धाद्रिसंज्ञिते। श्लेष्मान्तकालये रम्ये शङ्के देवं महेश्वरम् ॥९॥
तस्मात् श्लेष्मान्तकवनं गन्तव्यं त्रिदशेश्वर। अहमप्यागमिष्यामि शम्भोर्दर्शनकाम्यया ॥१०॥
वचनान्ते ततस्तस्य ब्रह्मणः परमेष्ठिनः। त्रिदशाधिपतिः श्रीमान् तुतोष सहसैव सः ॥११॥
ततः शीघ्रेण वेगेन रम्यं श्लेष्मान्तकालयम्। सम्प्राप्ता भ्रान्तहृदया ब्रह्मविष्णुपुरन्दराः ॥१२॥
ततश्चन्द्रनिभे नद्याः पुलिनेऽतिमनोरमे। विलसन्तीं विशुद्धाभिर्वालुकाभिः शुभाननाम् ॥१३॥
नीलाब्जपत्रनयनां तन्वङ्गीं सुपयोधराम्। भ्राजन्तीं वनखण्डस्य लक्ष्मीं मूर्तिमतीमिव ॥१४॥
तां दृष्ट्वा पार्वतीं देवीं ब्रह्मविष्णुपुरन्दराः। विस्मयं परमं जग्मुः किञ्चिन्मोहवशङ्गता ॥१५॥
प्रोवाच वचनं ब्रह्मा विष्ण्विन्द्राभ्यां सहागतः। हृदि शङ्कां निधायैवं रूपौदार्यगुणेन वै ॥१६॥
शुचिस्मिते त्वया भद्रे दृष्टोऽसौ भुवनेश्वरः। रूपौदार्येण सुश्रोणि पार्वती त्वं हि निश्चयः ॥१७॥
शम्भुं विना न लोकस्य कार्यं विभाति सुव्रते। शम्भुं लोकस्य भर्तारं न पश्यामो वयं वने ॥१८॥

---

हे ब्रह्मेन्द्र ! यदि यो रहस्य दानवहरूले थाहा पाए भने तिनीहरूले मेरो स्वर्गीय सम्पूर्ण राजपाठ अपहरण गर्नेछन्। मुञ्जवान् पर्वतमा जटामुकुट धारण गर्ने महेश्वरका प्रतिमूर्ति श्रीनन्दीजीलाई देखेर आएको छु। हे ब्रह्मेन्द्र ! नन्दीजी कै भनाइ अनुसार सम्पूर्ण पृथ्वीमा भ्रमण गर्दा पनि भगवान् शिवको दर्शन पाउन नसकेको हुँदा किंकर्तव्यविमूढ बनी म हजुरको शरणमा आएको छु। हे भगवान् पितामह ! योगबलद्वारा सम्पूर्ण भूखण्डको अवलोकन गरी म र मजस्ता समस्त अज्ञ दुनियाँको कल्याणकामना लिई अनुग्रह गर्नुहोस्। यस्तो इन्द्रको आग्रह सुनेर सम्पूर्णलोकका पितामह ब्रह्माजीले आफ्नो योगशक्तिद्वारा सबै कुरा विचार गरी आफ्नो धारणा व्यक्त गर्दै भन्न लाग्नुभयो ॥४-८॥

श्रीब्रह्माजी आज्ञा गर्नुहुन्छ - पर्वतराज हिमालयको पुण्यप्रद फेदी जहाँ नागराज श्लेष्मान्तकको पनि निवास छ, त्यहीँ नै कुनै रूपबाट भगवान् शिव हुनुहुन्छ भन्ने मलाई लागेको छ। यसर्थ हे देवेन्द्र ! त्यस श्लेष्मान्तक वनमा हामीहरू जानुपर्दछ। भगवान् श्रीशिवको दर्शनको उत्कट अभिलाषा लिएर म पनि त्यहीँ आइपुग्नेछु। ब्रह्माजीको आज्ञा सुनिसकेपछि देवराज इन्द्रमहाराज तुरुन्त नै सन्तुष्ट भए। यसपछि चाँडो भन्दा चाँडो श्लेष्मान्तकमा पुग्न अत्यन्त हडबडाएका ब्रह्मा, विष्णु र इन्द्र तीनै देवता सुन्दर पर्वतराज नागराज श्लेष्मान्तकको निवासमा पुग्नुभयो ॥९-१२॥

त्यसपछि पवित्रजला श्रीवाग्वतीजीको अर्धचन्द्राकारको अत्यन्त सुन्दर किनारामा सुन्दर सेता सेता बालुवा टल्किरहेको पुण्यप्रदेशमा सुन्दर मुखमण्डलले सुहाएकीश्रीपार्वतीमाताको समीपमा जानुभयो। नीलकमलसमान सुन्दर नयनयुगलले सुहाएकी, चन्द्राकार मुखमण्डलद्वारा टल्किरहेकी, आकर्षक कुचमण्डलले सुहाएकी, दिव्यदेहले वनपंक्तिलाई सुषमामय तुल्याउनुहुने श्रीलक्ष्मीजीकै सुन्दर विभूति श्रीपार्वतीजीलाई देखेर ब्रह्मा, विष्णु र इन्द्र यी तीनै देवता मोहयुक्त र आश्चर्यचकित हुनुभयो ॥१३-१५॥

यसपछि भगवान् विष्णु तथा इन्द्र महाराजका साथ त्यस पवित्र तीर्थस्थलमा आउनुभएका श्रीब्रह्माजीले भित्र पुरापुर निश्चय नभए तापनि रूप, उदारता र गुणले गर्दा यहाँ श्रीमाता पार्वतीजी नै हुनुहुन्छ कि भनी अनुमान गरेर भन्नुभयो - हे पवित्र र मन्द हास्यले सुहाएकी जननी ! हे कल्याणी ! हजुरले के भगवान् शङ्करको दर्शन पाउनुभएको छ ? रूप र हजुरमा रहेको उदारताको आधारमा विचार गर्दा निश्चय नै हजुर पार्वती माता हुनुहुन्छ भन्ने मेरो दृढ धारणा छ। हे सुव्रते ! हे जननी ! भगवान् शिवविनाको लोककार्यले शोभा दिँदैन। सम्पूर्णलोकको भरणपोषण गर्नुहुने भगवान् शम्भुको दिव्य रूपलाई हामीले दर्शन पाउन सकेनौँ ॥१६-१८॥

तस्य तद्वचनं श्रुत्वा ब्रह्मणः परमेष्ठिनः । अब्रवीदीदृशं वाक्यं पार्वती लोकसुन्दरी ॥१९॥
मृगकूटगिरेर्मूर्ध्नि विस्तीर्णे मृदुशाद्वले । द्रक्ष्यध्वे नियतं देवा मृगरूपधरं हरम् ॥२०॥
वचनान्तरं देव्याः प्रहर्षाकुलितेक्षणाः । मृगकूटगिरिं रम्यं प्रजग्मुः सुरसत्तमाः ॥२१॥
ततो मृगगिरेर्मूर्ध्नि विस्तीर्णे मृदुशाद्वले । शिलातले सुखासीनं प्रणम्याऽभ्यधिकं शुभम् ॥२२॥
एकशृङ्गं त्रिनयनं द्रष्टाङ्कुरविभूषणम् । मृगैरसंख्यैर्विविधैः समन्तात् परिवारितम् ॥२३॥
कुलपर्वतमध्यस्थमिव काञ्चनपर्वतम् । ददृशुः सहसा देवा हरं हरिणरूपिणम् ॥२४॥
ततः सप्रणयाः शीघ्रमलक्षा इव निःसृताः । जगृहुः सहसा शृङ्गं ब्रह्मविष्णुपुरन्दराः ॥२५॥
त्रिखण्डं पतितं शृङ्गं त्यक्त्वा तेषां करे तदा । निर्ययौ सहसाकाशं भगवान् हरिणेश्वरः ॥२६॥
ततो विषण्णवदनौ दृष्ट्वा देवेन्द्रशार्ङ्गिणौ । शिरस्यञ्जलिमाधाय ब्रह्मा स्तोत्रमभाषत ॥२७॥

ब्रह्मोवाच

नमस्त्रैलोक्यनाथाय त्र्यम्बकाय नमो नमः । हराय हरिकेशाय हेमवीर्यपराय च ॥२८॥
रुद्रेश्वराय रुद्राय रुरुवक्षःशिवाय च । व्यक्ताव्यक्तशरीराय जगतां सृष्टिहेतवे ॥२९॥
कैलासवासिने चैव मेरुमन्दरचारिणे । हिमवद्वासिने चैव विन्ध्याद्रिनिलयाय च ॥३०॥
श्लेष्मान्तकवने रम्ये चक्रक्रीडाविधायिने । मृगरूपं समास्थाय मृगमध्यविचारिणे ॥३१॥
वरदानैकदक्षाय स्थित्यनुग्रहकारिणे । त्रात्रे त्राणार्थिनां नित्यं नमोऽस्तु ते नमोऽस्तु ते ॥३२॥
नामभिर्विविधैः पुण्यैः स्तुत्वा त्रिभुवनेश्वरम् । भगवान् पद्मगर्भाभः पुनरेवेदमब्रवीत् ॥३३॥

ब्रह्मोवाच

व्यक्तीभव महादेव व्यक्तीभव महेश्वर । त्वं हि नः शरणार्थिनां त्राता त्रिभुवनेश्वरः ॥३४॥
इति श्रीपशुपतिपुराणे हरिणेश्वरशृङ्गग्रहणो नाम षोडशोऽध्यायः ॥

---

परमेष्ठीको यो निवेदन सुनेर लोकपावनी भुवनसुन्दरी श्रीपार्वती देवीले आज्ञा गर्नुभयो । हे देवगणहरू ! अत्यन्त कोमल, हरिया तृणहरूले गर्दा सुन्दर एवं प्रशस्त फराकिलो मृगकूट पर्वतको शिखरमा मृगरूपधारी भगवान् सदाशिवलाई अवश्य देख्नुहुनेछ । यसरी जगन्माता देवी श्रीपार्वतीजीको आज्ञा सुनिसकेपछि हर्षाश्रुले आँखा भरिएका ती देवाधिपतिहरू सुन्दर मृगकूटगिरिमा जानुभयो ॥१९-२१॥

त्यसपछि त्यस मृगस्थलीको पुण्य शिखरमा कोमल दुवोले भरिएको त्यस विशाल जमिनमा ढुङ्गामाथि सुखपूर्वक बसिरहेका, अत्यन्त सुन्दर, मृगपति, एक सिङ, तीन आँखाले सुहाएका, दाँतद्वारा कोमल तृणलाई चपाइरहनुभएका, चारै तिरबाट नाना प्रकारका असंख्य मृगहरूले घेरिनुभएका मृगरूप भएका शिवको दर्शन गर्नुभयो ॥२२-२३॥

त्यस कुलाचल पर्वतमालाको बीचमा सुशोभित काञ्चन पर्वतको मेरुदण्ड सुमेरुजस्तै हरिणको रूप ग्रहण गर्नुहुने भगवान् हरलाई देवताहरूले हतारिँदै दर्शन गर्नुभयो । भगवान् श्रीशिवको दर्शन पाउने बित्तिकै अत्यन्त विनीत बनेका शिवजीका भक्त ब्रह्मा, विष्णु र इन्द्रले कसैले थाहा नपाउने गरी लुकेर गई झटपट मृगेश्वरको सिङ समात्नुभयो । सो सिङ समाउने बित्तिकै ती देवताहरूको हातमा ३ टुक्राभै भरेको सिङलाई राखी उत्तिखेरै भगवान् हरिणेश्वर झटपट् आकाशमा उड्नुभयो । यस्तो आश्चर्यपूर्ण घटना देखेर इन्द्र र विष्णु मलिन मुख लगाएर उभिएको उभियै हुनुभयो । ब्रह्माजी भने दुई हात जोडी स्तोत्रपाठ गर्न लाग्नुभयो ॥२४-२७॥

ब्रह्माजी भन्नुहुन्छ – स्वर्ग, मर्त्य र पाताल तीनै लोकका अधिपति शिवजीलाई मेरो नमस्कार छ, यस्तै त्र्यम्बक्, हर र हरिकेश नामबाट जगत् विख्यात हुनुभएका हेमवीर्य, परभन्दा पनि पर सूक्ष्मातिसूक्ष्म श्रीमहेश्वरलाई म हृदयले वन्दना गर्दछु। संसारमा रुद्रेश्वर नामले प्रख्यात हुनुभएकाश्रीरुद्र भगवान् रुरुवक्षलाई शिरमा धारण गर्नुहुनेशिवलाई नमस्कार गर्दछु। व्यक्त एवं अव्यक्त दुवै शरीरधारी संसारको सृष्टिकर्ता, कैलासवासी एवं सुमेरु र मन्दराचल पर्वतमा घुम्नुहुने, हिमवत् खण्डमा बसोवास गर्नुहुने, विन्ध्याचल तथा रमणीय श्लेष्मान्तकवनमा निवास गरी चक्रक्रीडा समेत गर्नुहुने, फेरि मृगको रूप धारण गरी मृगस्थलीमा सवारी भई मृगकै बथानसँग मिसिएर घुम्नुहुने, भक्तहरूलाई वरदान दिन चतुर, संसारको पालन र भक्तमाथि अनुग्रह गर्नुहुने,कार्यसंरचनामा सँधैभर समर्थ र शरणागतको रक्षा गर्नुहुने हजुरलाई नित्य निरन्तर नमस्कार छ ॥२८-३२॥

यस्ता अनेकौं प्रकारका पुण्यनामहरूद्वारा त्रिभुवनेश्वर भगवान्को स्तुति गरी भगवान् ब्रह्माजी फेरि पनि विनम्र भएर प्रार्थना गर्न लाग्नुभयो । ब्रह्माजी प्रार्थना गर्नुहुन्छ – हे देवाधिदेव ! हजुर अहिले प्रकट हुनुहुन्छ। हे महेश्वर ! हे भगवान् ! हामीहरूका सामु उभिनुहोस, किनभने हामी शरणार्थीहरूको रक्षक शरणागतवत्सल र तीनै लोकका स्वामी हजुर नै हुनुहुन्छ ॥३३-३४॥

यसरी श्रीमत्पशुपतिपुराणमा हरिणेश्वर भगवान्को शृङ्गग्रहणनामक सोह्रौं अध्याय सकियो ।

# अथ सप्तदशोऽध्यायः

मृगरूपस्य भगवतः शिवस्योपदेशः(मृगरूप भगवान् शिवको उपदेश)

सनत्कुमार उवाच

ततस्तस्य वचः श्रुत्वा ब्रह्मणः परमेष्ठिनः। द्योतयन् प्रभयाऽऽकाशं भगवानिदमब्रवीत् ॥१॥
शृङ्गमात्रपरितुष्टा भवन्तः सुरसत्तमाः। किं कारणं शरीरेण हारिणेन पुनर्मम ॥२॥
क्रीडायामसमाप्तायां मायारूपेण भूतले। नेच्छामि स्वर्गमायातुमीदृशात् सम्प्रबोधनात् ॥३॥
अस्ति भूधरराजस्य पादे हिमवतः शुभे। नागह्रदमिति ख्यातं निरुद्धं वाग्वतीजलम् ॥४॥
चन्द्रबिम्बप्रतीकाशं पद्मोत्पलविभूषणम्। मीनचक्रसमाकीर्णं हंससारससंकुलम् ॥५॥
बहुभिः शैलमालाभिर्गोपितं लोकदुर्गमम्। तत्राऽहं प्रगमिष्यामि वासुकेस्तपसो बलात् ॥६॥
प्रद्युम्न इति विख्यातः कलौ कृष्णसुतो बली। स हनिष्यति दैत्येन्द्रं ब्रह्मणो वरदर्पितम् ॥७॥
निहते चेन्द्रदमने तदा कमलसम्भव। सेतुं विदार्य कृष्णेन वाग्वती परिमोक्ष्यते ॥८॥
वाग्वत्यां च नदीभासि वने जाते च मण्डले। समुत्पश्यामि ब्रह्मेन्द्र तच्छरीरं शिलातनुः ॥९॥
बहुभिः क्षीरधाराभिः सिक्तं समुपलक्ष्य च। सन्दृश्यते तदा लोकैः खनितेऽस्मिन् नदी तटे ॥१०॥
चम्पकद्रुमच्छायाभिः शोभितो मम विग्रहः। चतुर्मूर्तिधरो भक्त्या म्लेच्छैः सम्पूज्यते तदा ॥११॥
जित्वा कैरातराजानं वाक्येन प्रत्ययेन च। करिष्यति तदा राज्यं वैशाल्यधिपतिर्बली ॥१२॥
मूर्तिरिका ममैवाऽपि ब्रह्मणेष्टा प्रतिष्ठति। तस्मान्मान्या च पूज्या च श्रद्धया धर्मकाङ्क्षिभिः ॥१३॥

---

सनत्कुमार आज्ञा गर्नुहुन्छ – त्यसपछि भगवान् ब्रह्माजीको स्तुति सुनेर आफ्नो स्वर्णिम कान्तिद्वारा आकाशलाई प्रकाशित गर्दै भगवान् हरिणेश्वर शिवले यो आज्ञा गर्नुभयो – हे देवाधिदेव ! श्रीविष्णु आदि देववृन्द ! तपाईंहरू केवल सिङबाट मात्र सन्तुष्ट हुनुहुन्छ भने मेरो यो मृगशरीरले तपाईंहरूको कुन प्रयोजय सिद्ध हुन्छ ? म मायामृग पृथ्वीमा क्रीडा समाप्त नगरी यस प्रकारको स्तुति र प्रबोधनबाट स्वर्गमा आउन चाहन्न। गिरिराज हिमालयको सुन्दर फेदीमा नागह्रद नामको सरोवर विद्यमान छ, जहाँ वाग्वतीको जल रोकिएको छ। त्यो नागह्रद चन्द्रमण्डलसमान सुन्दर अनेकौं चन्द्रकमल तथा सूर्यकमलहरूद्वारा अलङ्कृत छ, रङ्गविरङ्गका माछाहरूले ढाकिएको छ र हाँस, सारस आदि जलचर पन्छीहरूलेढाकिएको छ ॥१–५॥

अनेकौं पर्वतमालाहरूद्वारा रक्षा गरिएको र साधारण मानिसहरूका लागि दुर्गम मानिएको त्यसपवित्र तीर्थस्थलमा म वासुकिको तपोबलले खिचिएको हुँदा जानेछु। पछि कलियुग लाग्नेबित्तिकै द्वापरको अन्त्यमा प्रद्युम्ननामक अत्यन्त बलशाली श्रीकृष्णका छोरा हुनेछन्। उनले नै ब्रह्माजीको वरदान पाई अत्यन्त सेखी गर्ने दैत्यराज महेन्द्रदमनलाई दमन गर्नेछन्, हुनेछ अर्थात् संहार गर्नेछन्। हे कमलसम्भव ब्रह्माजी ! त्यस समय इन्द्र दमनको वध भइसकेपछि सेतु फोरेर भगवान् श्रीकृष्णले वाग्वतीलाई मुक्त गर्नुहुनेछ। जब वाग्वती नदीरूप हुनुहुनेछ र त्यो वनप्रदेश पनि पुनः मानववस्ती हुनेछ। त्यसै समय म पनि हे ब्रह्माजी ! त्यहीं मृगको शरीरले शिलातनु भई उत्पन्न हुनेछु। अनेकौं दूधका धारा प्रवाहद्वारा पृथ्वी जम्मै भिजेको देखी वाग्वती नदीको तट खोस्रिएपछि त्यसबेला दुनियाँले मेरो मूर्ति देख्नेछन् ॥६–१०॥

चाँपको रुखको छाँयामुनि सुशोभित मेरो चार शिर भएको मूर्तिलाई त्यति बेलादेखि सदा सर्वदा नै अव्यक्त शब्दोच्चारण गर्ने किराती प्रजाहरूले बहुतै श्रद्धासाथ पूजा वन्दना आदि गर्दै जानेछन्। ती शिवभक्त सरल प्रकृतिका किराती राजाहरूलाई केवल वचनका भरमा विश्वास पारी बलशाली वैशाली देशका राजाले राज्यशासन हातमा लिने छन्। श्री ब्रह्माजीद्वारा पूजित मेरो नै एक अर्को मूर्ति पनि त्यहीं रहनेछ। त्यसकारण त्यस मूर्तिलाई धर्मात्माहरूले मान्य र परमपूज्य सम्झने छन् ॥११–१३॥

अत्र राज्यप्रदानादिष्वधिकारेषु भूरिषु। ब्राह्मणानां नियोगेन प्रवृत्तिः प्रभविष्यति ॥१४॥
लिच्छवीनां नरेन्द्राणां राज्यभूमिमिमां शुभाम्। प्रजाश्चाप्याश्रयिष्यन्ति बहिर्देशागतास्तदा ॥१५॥
शिशुपालावतारेण श्रीमता भक्तवर्मणा। करिष्यते जगत्कीर्तिरनेका मम शासनात् ॥१६॥
पुण्यवत्यः प्रजाः सर्वा धार्मिकाश्च नराधिपाः। प्रासादपङ्क्तयश्चित्रा भवन्ति मम तेजसा ॥१७॥
तदा सम्पूज्यते भक्त्या प्रजाभिर्देशवासिभिः। मद्वपुर्लोकनमितं कूटाङ्गारोदरस्थितम् ॥१८॥
प्राणं परिहरेद्यस्तु मम दक्षिणभागतः। प्रभावादस्य क्षेत्रस्य नरकं नाधिगच्छति ॥१९॥
मम पूर्वेण भागेन वाग्वत्याः सलिले शुभे। संस्नाति सततं यस्तु तस्य पुण्यं महद् भवेत् ॥२०॥
मम पूर्वोत्तरे भागे वाग्वतीतटमूर्धनि। वासुकेः प्रथमं कार्यं पूजनं च ततो मम ॥२१॥
घृतेन मधुना वापि दध्ना चेक्षुरसेन वा। गन्धोदकेन क्षीरेण शीततोयेन वा पुनः ॥२२॥
मम स्नानं प्रदत्तस्य तस्य पुण्यं महत्फलम्। अनेनैव भवेत्स्वर्गे लब्धभोगो नरोत्तमः ॥२३॥
घृतस्नानेन मल्लोकं मधुना तव मन्दिरम्। दध्ना तु वैष्णवं लोकं व्रजते मम शासनात् ॥२४॥
विद्याधर पदं भूयात् संस्नातीक्षुरसेन च। गन्धोदकेन गान्धर्वं क्षीरेण शशिनो लयम् ॥२५॥
शीतोदकस्य स्नानेन सर्वपापैर्विमुच्यते। अङ्गपूजां तु यः कुर्यात् पुष्पैर्नानाविधैर्मम ॥२६॥
सर्वकामफलं भुक्त्वा मोदते मनुजालये। अङ्गप्रदीपं यः कुर्यान् मम भक्त्या सुसंयतः ॥२७॥
स्वयंप्रभेषु देशेषु समुत्पत्तिः प्रवर्तते। अङ्गप्रदक्षिणां यस्तु करोति मम भक्तिमान् ॥२८॥
रूपवान् भवतेऽत्यन्तं वज्रसंहननोऽपि वा। अङ्गपूजां तु यो दद्यान्मम भक्त्याऽति यत्नतः ॥२९॥
आयुष्मान् बलवान् भूयाज्जायते च महीपतिः। दीपमालां तु यो दद्यात् भवने मम भक्तितः ॥३०॥

---

यस पूण्य भूमिमा राज्यारोहण गाराउने आदि सम्पूर्ण आधिकारिक कार्य ज्ञानवृद्ध विद्वान्हरूको निर्देशनद्वारा चल्ने छ। लिच्छवि राजाहरूको यस पुण्यप्रद राज्यभूमिलाईत्यस समयदेखि नै बाहिरका अरू प्रदेशहरूबाट पनि आएका नरनारीले आफ्नो आश्रय बनाउने छन्। मेरो अनुग्रहबाट शिशुपालका अवतार मानिनेश्रीमान् भक्तवर्माले जगत्मा अनेकौं कीर्ति कमाउने छन्। यही नै पुण्यप्रदेशमा मेरो सामर्थ्यबाट सम्पूर्ण प्रजा पुण्यशील तथा राजाहरू परम धार्मिक हुनेछन्। यहाँका समृद्ध घरहरू र नाना प्रकारका दरबार र देवालयहरू समेत पंक्तिबद्धरूपमा रहने छन्। त्यस समय देशवासी प्रजाहरूद्वारा भक्तिपूर्वक दुनियाँहरूका लागि सदा वन्दनीय कूटङ्गारको उदरवर्ती मूर्ति बहुतै पूजित हुनेछ ॥१४-१८॥

मेरो मूर्तिको दक्षिण भागमा पुगी जसले प्राण त्याग गर्नेछ, त्यो साधक त्यस क्षेत्रको प्रभावले गर्दा नरकमा जाने छैन। यस्तै मेरो मन्दिरको पूर्व भागमा रहेको वाग्वतीको शुभ जलमा जसले सदा स्नान गर्नेछ, त्यसलाई ठूलो पुण्य प्राप्त हुनेछ। मेरो मन्दिरको पूर्वोत्तर भागमावाग्वतीको किनारको टपूमा रहनुभएका वासुकिको नित्य पूजा जहिले पनि मेरो पूजा आराधना आदिभन्दा अगाडि नै गर्नुपर्दछ। घिउ, मह, दही, चिनी आदि र श्रीखण्ड मिसिएको शुद्धजल दुग्धधारा अथवा सुशीतल जलद्वारा मेरो मूर्तिमा जुन भक्त शास्त्रोक्त विधिले स्नान गराउला ॥१९-२२॥

त्यसरी स्नान गराउनाले त्यस साधकलाई ठूलो पुण्य फल मिल्दछ। यस साधनारत श्रेष्ठ पुरुषले यही महान् पुण्यफलद्वारा स्वर्गभोग प्राप्त गर्दछ ॥२३॥

फेरि यसरी नै मेरो सदाशिवको अनुग्रहबाट मेरो मूर्तिमा घृत स्नान गराएको पुण्यबाट मेरै लोकमा, महद्वारा स्नान गराउनाले तपाईंको ब्रह्मलोकमा, दहीद्वारा स्नान गराउनाले भगवान् श्रीविष्णुको धाममा साधक पुग्दछ। यस्तै जुन व्यक्ति इक्षुरसद्वारा भगवान्लाई स्नान गराउँदछ, त्यस साधकले विद्याधरको पदवी प्राप्त गर्दछ र श्रीखण्ड मिसिएको जलद्वारा स्नान गराउँनाले गन्धर्वलोक तथा दूधद्वारा स्नान गराउनाले चन्द्रलोक प्राप्त गर्न समर्थ हुन्छ। यस्तै चिसो जलद्वारा श्रीभगवान्लाई स्नान गराउनाले भक्त सम्पूर्ण पापबाट मुक्त हुन्छ। जुन साधक अनेकौं प्रकारका फूलहरूद्वारा मेरो अङ्गमा पूजा गर्दछ, त्यो व्यक्ति सम्पूर्ण मनोरथको फल भोग्दै मनुजालयमा आनन्दपूर्वक निवास गर्दछ। यसरी नै जुन साधक भक्तिपूर्वक अत्यन्त एकाग्रचित्तद्वारा मेरा सम्पूर्ण अङ्गहरूमा दीप समर्पण गर्दछ ॥२४-२७॥

त्यस साधकको जन्म स्वयंप्रभ देशमा हुन्छ। यसका साथ साथै जुन भक्तिमान् व्यक्ति भक्तिपूर्वक मेरा सम्पूर्ण अङ्गहरूको प्रदक्षिणा गर्दछ, त्यो अत्यन्त सुन्दर तथा वज्रजस्तो शरीर भएको हुन जान्छ। फेरि अत्यन्त भक्तिपूर्ण भै जुन साधक मलाई नानाप्रकारका अन्न चढाई पूजा अर्चना आदि गर्ला, त्यो साधक सम्पन्न र बलवान् भै राजा नै हुने छ। जुन भक्तले मेरो मन्दिरमा भक्तिपूर्वक दीपमालिका गर्नेछ, त्यो भक्त अत्यन्त सुन्दर एवं सूक्ष्म दृष्टिसम्पन्न भै बहुतै तेजस्वी हुनेछ ॥२८-३०॥

चक्षुष्मान् भवतेऽत्यन्तं तेजस्वी वापि चैव ह। गुग्गुलं दहते यस्तु सततं मम भक्तिमान् ॥३१॥
तस्य पार्श्वे विशेषेण वरं तस्मिन्न संशयः। तिलपात्रप्रदानेन त्रायते किल्विषादलम् ॥३२॥
तथैव च सुवर्णेन तथैव तिलधेनुना। हेमशृङ्गीं रौप्यखुरां चैलघण्टावलम्बिनीम् ॥३३॥
सवत्सां कपिलां दद्याद् भूयो यज्ञफलं लभेत्। रत्नकञ्चुकदानेन स भवेद् बहुरत्नवान् ॥३४॥
वस्त्रवान् वस्त्रदानेन भूमिदानेन भूमिमान्। गीतनृत्यप्रदानेन तूर्यनादादिनाऽपि वा ॥३५॥
मम पार्श्वेचरो भूत्वा जायते दुःखवर्जितः। नीलोत्पलार्किपद्मेन प्रदत्तेन श्रियं लभेत् ॥३६॥
वुकेन विल्वपत्रेण वरदोऽस्मि विशेषतः। मोक्षं धत्तूरकेणाऽपि करवीराद् धनप्रदः ॥३७॥
जात्यादिना सुगन्धेन पुष्पेण सुभगो भवेत्। पुष्पैः पत्रैः फलैः तोयैर्यो मामर्चति सन्ततम् ॥३८॥
सोऽपि स्वर्गफलं भुक्त्वा मोदते नाऽत्र संशयः। मम मूले समुद्भूतं प्रावृट्समयनिःसृतम् ॥३९॥
तीर्थं मृगोदकं नाम तत्रैव च प्रदृश्यते। मृगोदकोद्भवे तीर्थे वाग्वत्याः पश्चिमे तटे ॥४०॥
जन्मान्तरकृतैः पापैः स्नानमात्रेण मुच्यते। अत्र बर्बरिका नाम वाग्वत्याः पूर्वके तटे ॥४१॥
तत्रापि च कृतात् स्नानात् पार्वती परितुष्यति। अत्र कोषोदकं नाम तीर्थं कामफलप्रदम् ॥४२॥
कोषं कोषं समाहृत्य सुरैः सर्वैं प्रकल्पितम्। तीर्थे कोषोदके चाऽपि तदग्रे च नदीजले ॥४३॥
तत्राऽभिषेकं यः कुर्यात् सर्वमेधफलं लभेत्। त्रिसन्ध्यं तु समासाद्य सन्ध्यां यः समुपासते ॥४४॥
किल्विषात्स कृती त्यक्तः स द्विजः परिमुच्यते। भृगुप्रपतनं नाम कन्दरं चाऽपि विद्यते ॥४५॥
तस्मात्प्रपतनाद् वाऽपि स्वर्गलोके महीयते। भृगुकन्दरमूले तु ब्रह्मभेदे मनोरमे ॥४६॥
स्नायते विधिना येन ब्रह्मलोकं स गच्छति। अत्र गोरक्षकं नाम तीर्थं कामफलप्रदम् ॥४७॥

---

जुन भक्तले मेरो पूजा आराधना गर्दा गुग्गुल धूपको सुवास चढाउँदछ, त्यसलाई सँधैभरि शुभ नै हुन्छ यसमा कत्ति पनि शङ्का छैन। यसरी नै तिलपात्र दान गर्ने, सुवर्णदान गर्ने र तिलधेनु दान गर्ने दानशील पुण्यात्माहरू निष्पाप बन्दछन्। यसरी नै सुनको सिङ, चाँदीको खुर, वस्त्र र घण्ट्य आदिले सुशोभित कपिला गौको दान गर्नाले धेरै धेरै महायज्ञहरू गरेको फल प्राप्त हुनेछ। रत्नैरत्नले परिपूर्ण कञ्चुक दान गर्नाले भक्त अर्को जन्ममा बहुरत्नसम्पन्न बन्दछ। यस्तै वस्त्रदानको पुण्यबाट बहु वस्त्रवान् र भूमिदानको पुण्यबाट भूपति बन्दछ ॥३१-३४॥

गीत, नृत्य आदि गरी भगवान् शम्भुको पर्वहरूमा जागा रहनाले अथवा गीत, नृत्य आदिको साधनहरूको दान गर्नाले वाद्यवादन आदिको सामग्री दान गर्नाले भक्त मेरै पार्श्ववर्ती भै दुःखरहित बन्दछ। यसरी नै नीलकमल तथा सूर्यकमल आदिको दानद्वारा लक्ष्मी प्राप्त हुन्छ। यसका साथ साथै वुकीफूल, बेलपत्ता चढाउने भक्तमाथि पनि म बहुतै प्रसन्न बनी वरदान प्रदान गर्दछु। यसरी नै धतूराको फूल समर्पण गर्नेलाई धनवान् बनाउँदछु ॥३५-३७॥

जाइको फूल आदि सुगन्धी फूलहरू चढाउनाले भक्त सुन्दर तथा सौभाग्यशाली बन्दछ। त्यसले स्वर्ग फल भोगी आनन्द प्राप्त गर्दछ। यसमा कत्ति पनि शङ्का छैन। मेरो मन्दिरभन्दा तल्लापट्टि वर्षाकालमा प्रकट हुने मृगोदक तीर्थ त्यहींनिर देखिन्छ। मृगोदकतीर्थमा वाग्वतीको पश्चिम किनारातर्फ स्नानमात्र गर्नाले भक्त जन्मजन्मान्तरमा गरिएका पापहरूबाट मुक्त हुन्छ। बर्बरिका नामको तीर्थ पनि वाग्वतीको पूर्वकिनारा तर्फ छ। त्यहाँ पनि स्नान गर्नाले पार्वतीजी सन्तुष्ट हुनुहुन्छ। यहीं नै फेरि कोषोदक नामको तीर्थ छ, जसले साधकहरूलाई इच्छानुरूप फल दिन्छ ॥३८-४२॥

सम्पूर्ण तीर्थहरूका कोष जम्मा गरी सम्पूर्ण देवताहरूले कोषोदक तीर्थको कल्पना गरेका हुन्। कोषोदक तीर्थमा र त्यसैको अगाडिपट्टि बहनुहुने पवित्र नदीको जलमा अभिषेक गर्ने व्यक्तिले सम्पूर्ण किसिमका यज्ञहरू सम्पादन गरेको फल प्राप्त गर्दछ। यस पुण्य तीर्थमा बिहान, दिउँसो र साँझमा आई जसले स्नान सन्ध्या गर्दछ। त्यस पुण्यात्माले शरीर, मन र वचन आदिद्वारा गरिएका सम्पूर्ण पापबाट मुक्त भएर मोक्ष प्राप्त गर्दछ। यसैको समीपमा भृगुपतन नामको कन्दरा पनि छ, त्यहाँबाट खसी मृत्यु हुने प्राणीले स्वर्ग प्राप्त गर्दछन्। भृगुकन्दरतीर्थको मूल, मनोहर ब्रह्मभेद तीर्थमा जसले विधिपूर्वक स्नान गर्दछ, त्यो साधक ब्रह्मलोकमा प्राप्त हुन्छ। यहीं नै इच्छानुकूल फल दिने गोरक्षनामको तीर्थ छ, त्यस पुण्यतीर्थमा जुन भक्त अभिषेक तथा स्नानादिकार्य सम्पादन गर्दछ, त्यस व्यक्तिले हजारौं गाईदानको फल प्राप्त गर्दछ ॥४३-४७॥

तत्राऽभिषेकं यः कुर्याद् गोसहस्रफलं लभेत्। गौरीशिखरमूले तु वाग्वत्यां स्नाति यो नरः ॥४८॥
स्त्रीषु सौभाग्यमाप्नोति देव्या लोकं स गच्छति। स्नानकुण्डं समासाद्य स्नायते यस्तु मानवः ॥४९॥
स्कन्दलोकमवाप्नोति भूत्वा वैश्वानरद्युतिः। अत्र पञ्चनदं नाम तीर्थं ब्रह्मर्षिसेवितम् ॥५०॥
पञ्चयज्ञफलं तत्र स्नानमात्रेण लभ्यते। शूलोद्गङ्गे शुभे तीर्थे संस्नाति यस्तु मानवः ॥५१॥
जातिस्मरत्वमाप्नोति तीर्थिको नियमान्वितः। प्राप्याम्रातकपानीयं गुह्यं गुह्यकरक्षितम् ॥५२॥
स्नायते यस्तु विधिना यक्षलोकं स गच्छति। अत्र ब्रह्मोदकं प्राप्य तीर्थं कन्दरनिःसृतम् ॥५३॥
स्नायते विधिना यस्तु न मृत्युस्तं प्रपश्यति। योगकुण्डे देववाप्यां कुमारकन्दरेऽपि च ॥५४॥
ब्रह्मदीपे विशेषेण स्नातव्यं स्वर्गकाङ्क्षिभिः। यस्तु सम्पूजयेद् भक्त्या पशुयोनिं मम प्रियाम् ॥५५॥
मुच्यते पशुपाशेभ्यः कामसिद्धिश्च लभ्यते। यो दद्यान्ममक्षेत्रेऽस्मिन् ब्राह्मणेभ्यश्च भोजनम् ॥
तस्य यज्ञफलं भूयात् स्वर्गलोकमवाप्नुयात् ॥५६॥

इति श्रीपशुपतिपुराणे हरिणेश्वरवाक्यं नाम सप्तदशोऽध्यायः।

---

गौरीशिखरको मूलमा सुशोभित वाग्वतीको तीर्थमा जुन व्यक्तिले अभिषेक र स्नानादि कर्म गर्दछ, त्यस व्यक्तिले नारीहरूमा सौभाग्यशालिनी नारी प्राप्त गरी अन्तमा देवीलोक प्राप्त गर्दछ। स्नानकुण्ड नामको कुण्डमा गई जुन मनुष्यले स्नान गर्दछ। त्यो व्यक्ति अग्नि तुल्य कान्तिमान् भई स्कन्दलोकमा प्राप्त हुन्छ। यहीँ नै फेरि पञ्चनद नामको ठूला ठूला ब्रह्मर्षिहरूले समेत सेवा गरिएको तीर्थ छ, जहाँ स्नानमात्र गर्नाले पनि पञ्चयज्ञहरूको फल प्राप्त गर्न सकिन्छ। यसरी नै जुन साधक शूलोदगङ्गा नामको शुभतीर्थमा स्नान गर्दछ, त्यो नियमी तीर्थयात्री बितेका जन्मजन्मान्तरका कुराहरू सम्झन सक्ने शक्तिले सम्पन्न बन्दछ। यसरी नै यक्षहरूद्वारा सुरक्षित गुह्य आम्रातकपानीय नामको तीर्थमा स्नान गर्दछ, त्यसले तल बताइए अनुसार फल प्राप्त गर्दछ ॥४८-५२॥

जुन धर्मात्मा साधकले उक्त तीर्थमा विधिपूर्वक स्नान गर्दछ, त्यस व्यक्तिले यक्षलोक प्राप्त गर्न सक्दछ। यसरी नै यस कन्दराबाट निस्किएको ब्रह्मोदक तीर्थमा आई जुन पुण्यात्माले स्नान गर्नेछ, त्यसलाई मृत्युले देख्न सक्ने छैन। विशेषतः स्वर्गको इच्छा गर्ने साधकले योगकुण्ड, देववापी, कुमारकन्दरा तथा ब्रह्मदीपतीर्थमा स्नान गर्नु अत्यन्त आवश्यक छ। यसरी नै जुन साधकले भक्तिपूर्वक मेरो परमप्रिय पशुयोनिको पूजा गर्दछ, त्यो पशुपाशहरूबाट मुक्त हुन्छ र त्यसका सम्पूर्ण कामनाहरू पनि सिद्ध हुन्छन्। मेरो यस पवित्र क्षेत्रमा जुन व्यक्तिले ब्राह्मणहरूलाई भोजन गराउँदछ,त्यसलाई महायज्ञको फल प्राप्त हुन्छ, त्यसले सहजै स्वर्गलोक प्राप्त गर्दछ ॥५३-५६॥

यसरी श्रीपशुपतिपुराणमा श्रीहरिणेश्वरको वाक्यकथन नामको सत्रौँ अध्याय समाप्त भयो।

# अथ अष्टादशोऽध्यायः

हरिणेश्वरशृङ्गखण्डानां लिङ्गरूपेण प्रतिष्ठापनायोपदेशः
(हरिणेश्वरका सिङका टुक्राहरूको लिङ्गरूपमा प्रतिष्ठापन गर्न शिवको उपदेश)

सनत्कुमार उवाच

तस्य तद्वचनं श्रुत्वा ब्रह्मा लोकपितामहः । अब्रवीदीदृशं वाक्यं नमस्कृत्य पुनः पुनः ॥१॥
दुःखार्णवे निमग्नानां प्राणिनां मोक्षकारणात् । त्वन्मुखाद् विश्रुतं देव पुराणममृतोपमम् ॥२॥
त्वन्मुखोक्तमिदं सारं पुराणं परमेश्वर । शृणोति विधिना यस्तु स्वर्गस्तस्य न दूरतः ॥३॥
इदं पुनर्महापुण्यं पुराणं लोकदुर्लभम् । शृणोति सततं यस्तु स्वर्गस्तस्य न दुर्लभः ॥४॥
मत्करस्थेन शृङ्गेण विष्णोर्हस्ते स्थितेन च । पुरन्दरकरस्थेन किं कर्तव्यं महेश्वर ॥५॥
तस्य तद्वचनं श्रुत्वा ब्रह्मणः परमेष्ठिनः । अब्रवीदीदृशं वाक्यं भगवान् हरिणेश्वरः ॥६॥

श्रीमहादेव उवाच

त्वत्करस्थमिदं शृङ्गं हारिणं मम मध्यमम् । अत्रैव स्थाप्यतां ब्रह्मन् निर्मले निम्नगातटे ॥७॥
गोकर्णेश्वर इत्येवं पृथिव्यां ख्यातिमेष्यति । दशग्रीवादयो वीराः साधयिष्यन्ति तत्र माम् ॥८॥
त्वत्करस्थमिदं विष्णो शृङ्गमूलं सुशोभनम् । नीत्वा रसातले रम्ये स्थापनीयं प्रयत्नतः ॥९॥
तच्च सम्पूज्यते भक्त्या नागदानवराक्षसै । शृङ्गेश्वरमिति प्रोक्तं पातालतलवासिभिः ॥१०॥
शृङ्गाग्रं हारिणं पुण्यं मामकं त्रिदशेश्वर । नीत्वा सुरालये रम्ये स्थापनीयं ममाऽऽज्ञया ॥११॥
यदा हरति रक्षेन्द्रस्त्वत्पुराद्बलदर्पितः । स च दक्षिणगोकर्णो भविष्यति पुरन्दर ॥१२॥
इत्युक्त्वा भगवान् शम्भुः सुरासुरनमस्कृतः । द्योतयन् प्रभयाऽऽकाशं हिमवन्तं विनिर्ययौ ॥१३॥

इति श्रीपशुपतिपुराणे शृङ्गेश्वरप्रतिष्ठापनं नाम अष्टादशोऽध्यायः ॥

---

श्री सनत्कुमार आज्ञा गर्नुहुन्छ – हरिणेश्वर भगवान् शिवका उपर्युक्त वचनहरू सुनी सम्पूर्ण लोकका पितामह भगवान् ब्रह्माजीले बारम्बार नमस्कार गरी यसप्रकार बिन्ती गर्नुभयो – हे देवाधिदेव महादेव ! दुःखसमुद्रमा डुबेका प्राणीहरूको मोक्षका निमित्त अमृततुल्य पुराण स्वयं हजुरद्वारा नै हामीहरूले सुन्यौं । हे परमेश्वर ! हजुरकै मुखारविन्दबाट आज्ञा भएको यो पुराण सकल शास्त्रको निष्कर्ष हो । जुन भक्त साधकले विधिपूर्वक यसको श्रवण गर्दछ, त्यसका निम्ति स्वर्ग एकदम स मीपमा रहन्छ । मनुष्यलोकमा अत्यन्त दुर्लभ अत्यन्त पुण्यप्रद यस पुराणलाई जसले निरन्तर श्रवण गर्दछ, त्यसका लागि स्वर्ग दुर्लभ छैन । हे भगवान् महेश्वर ! हे शम्भो ! मेरो, भगवान् विष्णुको र इन्द्रको हातमा रहेका सिङका हामी के के गरौं । परमेष्ठी श्रीब्रह्माजीको त्यो वचन सुनी भगवान् श्रीहरिणेश्वर यस प्रकार आज्ञा गर्नु हुन्छ ॥१–६॥

भगवान् महेश्वर आज्ञा गर्नुहुन्छ – हे ब्रह्माजी ! हजुरको हातमा रहेको हरिणरूपधारी मेरो सिङको जुन मध्यखण्ड छ, त्यसलाई त्यहीं शुद्ध नदीको किनारामा स्थापित गर्नुहोस् । जुन भविष्यमा गोकर्णेश्वर नामले पृथ्वीमा प्रसिद्ध हुनेछ । रावण, वाणासुर आदि वीरहरू आएर यहाँ मेरो आराधना गर्नेछन् । हे भगवान् विष्णु ! यो हजुरको हातमा रहेको सुन्दर सिङको मूलभाग रमणीय रसातलमा लगी बडो जतनसँग स्थापन गर्नुहोस् । जसको पूजा नाग, दानव, राक्षस आदि पातालमा बस्ने प्राणीहरूले शृङ्गेश्वर नामद्वारा संसारमा प्रसिद्ध गराई मेरो पूजा वन्दना र आराधना गर्नेछन् ॥७–१०॥

हे महाराज इन्द्र ! तपाईंको हातमा रहेको मेरो यो शृङ्गाग्र भाग मेरो आज्ञा लिई अत्यन्त सुन्दर सुरपुर अमरावतीमा स्थापना गर्नुहोस् । हे पुरन्दर इन्द्र महाराज ! जुनबेला राक्षसराज लङ्काधिपति रावणले आफ्नो शक्ति र बलको घमण्डद्वारा बलात् तपाईंको राजधानीबाट त्यस मूर्तिलाई अपहरण गर्ने छन्, तब त्यही मूर्ति दक्षिणगोकर्ण नामले संसारमा प्रख्यात हुनेछ । यसरी सुरासुरद्वारा सदा वन्दनीय भगवान् हरिणेश्वर शम्भुले आफ्नो देदीप्यमान तेजद्वारा आकाशलाई प्रकाशित गर्दै हिमालय पर्वतमा ज्ञान यात्रारम्भ गर्नुभयो ॥११–१३॥

यसरी श्रीपशुपतिपुराणमा शृङ्गेश्वरप्रतिष्ठापन नामको अठारौं अध्याय सकियो ।

# अथ एकोनविंशोऽध्यायः

शृङ्गेश्वरलिङ्गानां प्रतिष्ठा (शृङ्गेश्वरलिङ्गहरूको प्रतिष्ठा)

सनत्कुमार उवाच

वाक्यं भगवतः श्रुत्वा ब्रह्मविष्णुपुरन्दराः। विस्मयं परमं जग्मुः किञ्चिन्मोहवश गताः ॥१॥
ततो गृहीत्वा शृङ्गाग्रं हारिणं लोकपूजितम्। अमरां तां पुरीं रम्यां निर्ययौ त्रिदशेश्वरः ॥२॥
शृङ्गमूलं तु तन्नीत्वा पाताले रत्नदीपिते। स्थापयामास सहसा भगवान् मधुसूदनः ॥३॥
मध्यमं हारिणं शृङ्गं चन्द्रभागासरित्तटे। स्थापयामास तत्रैव भगवान् कमलोद्भवः ॥४॥
ब्रह्मणा स्थापितं श्रुत्वा गोकर्णं भुवनेश्वरम्। सम्प्राप्ता मुनयः स्वर्गात्तीर्थयात्राभिलाषिणः ॥५॥
यावन्ति भुवि तीर्थानि गङ्गादीनि वनोत्तमे। प्रभावाद्देवदेवस्य सम्भूतानि शुभानि च ॥६॥
अशेषाणि परिभ्राम्य मुनयः शंसितव्रताः। ब्रह्माणं प्रणिपत्योचुर्गोकर्णं परिपूज्य च ॥७॥
भगवंस्त्वां विना स्वर्गे स्थातुं नेच्छामहे वयम्। तस्मात्स्वर्गमलङ्कर्तुं प्रसादं कुरु पद्मज ॥८॥
तेषां श्रुत्वा महर्षीणां वाक्यं विगतकल्मषः। प्रक्रीडितमृगाकीर्णे प्रकीर्णगजगण्डके ॥९॥
कोकिलालापललिते चलञ्चूतादिपल्लवे। श्लेष्मान्तकवने पुण्ये पुष्पिते पादपे सदा ॥१०॥
निवासाय समादिश्य पौत्रं विश्रवसं मुनिम्। ब्रह्मा मुनिगणैः सार्धं स्वाराज्यसदनं ययौ ॥११॥

इति श्रीपशुपतिपुराणे गोकर्णस्थापनोनामैकोनविंशोऽध्यायः।

---

सनत्कुमार आज्ञा गर्नुहुन्छ – भगवान् हरिणेश्वरको यो आज्ञा सुनेर ब्रह्मा, विष्णु र इन्द्र अत्यन्त आश्चर्यचकित भएर केही मोहित पनि हुनुभयो। त्यसपछि लोकमा अत्यन्त पूजनीय भएको भगवान् हरिणेश्वरको सिङको टुप्पो लिएर देवाधिपति इन्द्र महाराज रमणीय स्वर्गतर्फ लाग्नुभयो। त्यस्तै भगवान् मधुसूदनले त्यस सिङको फेद लिएर नानाप्रकारका रत्नहरूद्वारा झकाझक भएको पातालमा गईस्थापना गर्नुभयो। यसरी नै ब्रह्माजीले भगवान् हरिणेश्वरको सिङको माझखण्ड लिएर ब्रह्माजीले त्यहीँ नै चन्द्रभागानदीको किनारामा स्थापना गर्नुभयो ॥१–४॥

ब्रह्माजीद्वारा भुवनेश्वर गोकर्ण स्थापित भएको सुनेर तीर्थयात्रा गर्न चाहने मुनिहरू पनि स्वर्गबाट त्यहीँ नै आए। भूमण्डलमा गङ्गा आदि जति शुभ तीर्थ छन्, ती सम्पूर्ण महादेवको प्रभावले गर्दा वनहरूमा सर्वश्रेष्ठ श्लेष्मान्तक अर्थात् मृगस्थलीमा प्रकट भए। आआफ्ना तपस्या र नियमादिबाट प्रख्यात हुनुभएका ऋषिहरू सम्पूर्ण तीर्थहरूको भ्रमण समाप्त गरेर भगवान् गोकर्णेश्वरको पूजा र प्रणाम गरी ब्रह्माजीसँग भन्न लागे। भगवान् हामी हजुर विना स्वर्गमा बस्न चाँहदैनौं। अतः हे पितामह! अब हजुरले स्वर्गलाई सुशोभित गराउनुहोस् ॥५–८॥

ती महर्षिहरूको त्यस किसिमको प्रार्थना सुनेर कल्मषशून्य ब्रह्माजी खेलिरहेका मृगहरूले व्याप्त भएको, हात्ती, गैंडा आदि ठूला ठूला वनजन्तुहरूले ढाकिएको कोइलीहरूका परा, पश्यन्ती, मध्यमा र वैखरीभन्दा माथिको स्पष्ट पाँचौ आलापद्वारा सुन्दर भएको, आँप आदि रुखका पालुवाहरूको चञ्चलताले अत्यन्त सुन्दर सदा फुलिरहेका वृक्षावलीले गर्दा अत्यन्त नै रमणीय भएको यस्तो अखण्ड पुण्यमय श्लेष्मान्तक वनमा आफ्ना नाति विश्रवा मुनिलाई निवासका लागि आज्ञा गर्नुभयो रसम्पूर्ण ऋषिवृन्दलाई साथ लिएर ब्रह्माजी स्वर्गको आफ्नो लोकमा जानुभयो ॥९–११॥

यसरी श्री पशुपतिपुराणमा गोकर्णेश्वरस्थापननामक उन्नाईसौं अध्याय सकियो।

# अथ विंशोऽध्यायः

रावणजन्म वैरकारणात् कुबेरस्य कैलासवासः

(रावणको जन्म र वैरभावका कारण कुबेरद्वारा कैलासवासको आरम्भ)

सनत्कुमार उवाच

एतस्मिन्नन्तरे काले सुमाली राक्षसाधिपः। अप्रेषयद् दुहितरं पार्श्वं विश्रवसो मुनेः ॥१॥
गता सा नैकसी देवी पितुर्वचनकारिणी। गोकर्णारण्यकं रम्यं मुनीन्द्रो यत्र विश्रवाः ॥२॥
कन्यां रूपवतीं दृष्ट्वा तन्वङ्गीं सुपयोधराम्। धर्मेण वरयामास विश्रवा मुनिपुङ्गवः ॥३॥
रराम स तया सार्धं काममोहवशङ्गतः। तुतोष नैकसी चापि लब्ध्वा विश्रवसं पतिम् ॥४॥
तस्या देव्या विशालाक्ष्या गर्भादेव भयङ्करः। सुषुवे विश्रवाः पुत्रो दशग्रीवो महाबलः ॥५॥
तस्य सञ्जातमात्रेण कम्पते धरणी भृशम्। मांसाभिलाषिणो दृष्ट्वा पतन्ति दिवि पक्षिणः ॥६॥
ववर्ष रुधिरं चैव मेघो घोरस्वरोऽभवत्। निष्प्रभश्च तदादित्यश्चन्द्रश्चैव व्यजायत ॥७॥
दशशीर्षयुतं पुत्रं नीलाम्बुजचयप्रभम्। सम्प्राप्य विश्रवास्तत्र तुतोषाऽतिशयं तदा ॥८॥
कालेन वर्धयामास भ्रातृभ्यां सह तद्वपुः। वीर्येण वयसा चाऽपि संश्रितः स बभूव ह ॥९॥
एकदा तु दिने प्राप्ते धनेशं पुष्पकस्थितम्। दृष्ट्वा दशशिराः श्रीमान् मातरं वाक्यमब्रवीत् ॥१०॥

दशग्रीव उवाच

विमानं पुष्पकं पुण्यं केनोपायेन विद्यते। स च कस्य सुतवाक्यं विस्मयोद्धतमानसा ॥१२॥

नैकस्युवाच

तवाग्रजोऽयं हे पुत्र धनेशो लोकसम्मतः। अर्जितं तपसा तेन विमानं पुष्पकं स्थितम् ॥१३॥
त्रैलोक्यमपि वश्यः स्याद्यदि पुत्र त्वमिच्छसि। आराध्यतां पितुर्वाक्यं गोकर्णे भुवनेश्वरम् ॥१४॥

---

सनत्कुमार आज्ञा गर्नुहुन्छ – यसैताका राक्षसहरूका स्वामी सुमालीले आफ्नी छोरीलाई विश्रवा ऋषिको समीपमा पठाए ॥१॥ बाबुको आज्ञा पालना गर्दै ती नैकसी देवी सुन्दर गोकर्णेश्वरको वनमा गइन्, जहाँ विश्रवा मुनि बस्नुहुन्थ्यो ॥२॥ सलक्क परेकी, उँचो पुष्टपुष्ट स्तनमण्डल भएकी र अत्यन्त रूपवती कन्यालाई देखेर मुनिराज विश्रवाले उनीसँग धर्मपूर्वक विवाह गर्नुभयो ॥१–३॥

विश्रवा ऋषि पनि कामार्त बनी अज्ञानवश नैकसीका साथ रमण गर्न लाग्नुभयो। उता नैकसी पनि विश्रवा जस्ता पुण्यात्मा ऋषिलाई पतिका रूपमा पाएर अत्यन्त सन्तुष्ट भइन्। ठूला ठूला अति सुन्दर आँखा भएकी ती नैकसी देवीको गर्भबाट नै अत्यन्त बलवान् तथा भयङ्कर दश शिर भएको विश्रवा ऋषिको छोरा पैदा भयो। त्यो पुत्र पैदा हुने बित्तिकै डरलाग्दो किसिमले भुईँचालो जान लागेको दृश्य देखेर केवल मासुद्वारा शरीर पोषण गर्ने पक्षी आकाशमा उड्न लागे। डरलाग्दोसँग गर्जने मेघहरू रगतको वर्षा गर्न लागे र सूर्य तथा चन्द्रमा कान्तिरहित भए ॥४–७॥

दश शिरसहित नीलकमलको पुञ्जजस्तो शोभामय नीलो वर्णको पुत्र पैदा गरी त्यसबेला ऋषि विश्रवा अत्यन्त सन्तुष्ट भए। उनले अरू दुई भाइ सहित रावणलाई धेरै कालसम्म पालन गरी हुर्काए, रावण पनि दीर्घायु, बल र पराक्रमशाली भए। एक दिन आकाशमा पुष्पक विमान चढी सयल गर्ने कुबेरलाई देखेर पराक्रमी र उत्साही रावणले आफ्नी आमा नैकसीसँग सोधे ॥८–१०॥

रावण भन्दछन् – हे माताजी ! यो पुण्यप्रद पुष्पक विमान कसरी प्राप्त हुन्छ र त्यो पुष्पकमा बसेको व्यक्ति कसको छोरो हो ? म सुन्न चाहन्छु। छोराको यो वचन सुनी चारुहासिनी, प्रसन्न मन भएकी नैकसीले यसरी आफ्नो छोरालाई यसप्रकार भन्न लागिन् ॥११–१२॥

नैकसी भन्दछिन् – हे बाबु छोरा ! यी तिम्रा दाज्यू सम्पूर्ण देवद्रव्यका अधिपति, सम्पूर्ण देवताहरूद्वारा सम्मानित कुबेर हुन्, यिनले आफ्नो ठूलो तपस्याद्वारा पुष्पकविमान प्राप्त गरेका हुन् ॥१३॥ हे बाबु छोरा ! यदि तिमीजस्ता पराक्रमीले चाहना गर्दछौ भने तीनै लोकका निवासी वशमा हुन सक्दछन्, बाबु ! तिमी आफ्नो पिताजीको आज्ञा लिएरगोकर्णेश्वर तीर्थमा गई भुवनेश्वर शिवको आराधना गर ॥१३–१४॥

ततः सम्पूजयामास गोकर्णं राज्यलिप्सया। छित्त्वा छित्त्वाऽऽत्मनः शीर्षं पूर्णाहुतिमकल्पयत् ॥१५॥
वर्षाणां हि सहस्राणि दश पूर्णे दशाननम्। वरं प्रादात्समागत्य ब्रह्मा सुरगणैर्वृतः ॥१६॥
पौत्रं लब्धवरं श्रुत्वा सुमाली सह राक्षसैः। माल्यवन्तं पुरस्कृत्य प्राप्तवान् वनमुत्तमम् ॥१७॥
दृष्ट्वा सम्पूजयामास पौत्रं लब्धवरं तदा। मुमुदे सहसाऽत्यन्तं लब्धाऽऽस्पदमिवोत्तमम् ॥१८॥
प्रहस्तवचनं श्रुत्वा सर्वैः सह निशाचरैः। लङ्काद्वारं समासाद्य धनेशमिदमब्रवीत् ॥१९॥
त्यज लङ्कापुरीं दिव्यां रत्नतोरणमालिनीम्। अस्माकं राजधानीं तां न त्वं तत्र निवत्स्यसि ॥२०॥
इत्युक्तञ्च वचः श्रुत्वा स्वानुजस्य धनेश्वरः। श्लेष्मान्तकवनं गत्वा पितरं वाक्यमब्रवीत् ॥२१॥
निशाचरैः सहाऽऽगत्य दशग्रीवो ममाऽनुजः। लङ्का त्याज्या त्वयेत्युक्त्वा संस्थितो बलदर्पितः ॥२२॥
किं कर्तव्यं मया नाथ युद्धायुद्धविवक्षया। ज्ञात्वा त्वं सर्वकार्याणां तदादेष्टुं ममाऽर्हसि ॥२३॥
इति वाचं स्वपुत्रस्य श्रुत्वा हार्दं सुपेशलम्। अब्रवीदीदृशं वाक्यं विश्रवा मुनिसत्तमः ॥२४॥

विश्रवा उवाच –

कैलाशशिखरोत्सङ्गे विस्तीर्णे स्वर्गसन्निभे। महादेवसखो भूत्वा वस्तव्यं मम शासनात् ॥२५॥
अत्र मन्दाकिनी नाम नदीनां प्रवरा नदी। मानसञ्च सरः पुण्यं तत्रैव प्रविराजते ॥२६॥
पितुर्वाक्यमिदं श्रुत्वा धनेशः सह गुह्यकैः। त्यक्त्वा रम्यां पुरीं लङ्कां कैलासं गिरिमाव्रजत् ॥२७॥

इति श्रीपशुपतिपुराणे गोकर्णेश्वरप्रतिष्ठापनं नाम विंशोऽध्यायः।
इति पूर्वार्धखण्डः

---

त्यसपछि आमाको आज्ञा अनुसार पिताको समेत उपदेश लिएर भुवनेश्वरको आराधनाको प्रसङ्गमा राज्यभोगादिको लोभको वशमा परेर रावणले गोकर्णेश्वरलाई आफ्नो शिर काटी काटीकन पूर्णाहुति दिन लागे। यसरी तपस्या गर्दा गर्दा १० हजार वर्ष पूर्ण भए पछि देवताहरूका साथ आई ब्रह्माजीले रावणलाई वरदान दिनुभयो। आफ्नो नातिले वरदान पाएको थाहा पाई माल्यवान् आदि अनेकौं राक्षसलाई अघि लगाएर सुमाली त्यस उत्तम गोकर्णेश्वरको जङ्गलमा आए ॥१५–१७॥

त्यसपछि वरदान पाएको नाति रावणलाई देखी उनले अत्यन्त प्रशंसा गरे, पूजा गरे र उत्तम राज्यप्राप्ति भएको जस्तै अनुभव गरी त्यस अवसरमा प्रसन्नताको अनुभव गरे। त्यसपछि प्रहस्तको वचन सुनेर रावण सम्पूर्ण राक्षसहरूका साथ लङ्काको ढोकामा गई धनाध्यक्ष कुवेरलाई यस प्रकार भन्न लागे – रत्नैरत्नयुक्त तोरणहरूको मालायुक्त यो दिव्य लङ्कापुरी छोडिदिनुहोस्, यो हाम्रो राजधानी हो। तपाईं यहाँ बस्न पाउनुहुन्न ॥१८–२०॥

आफ्नो भाइ रावणको यो वचन सुनी कुबेरले श्लेष्मान्तक वनमा गई पिताजी विश्रवा मुनिसँग यो बिन्ती गरे – हे पिताजी! मेरो भाइ दशग्रीवले सम्पूर्ण राक्षसहरूका साथ मिली तपाईंले लङ्का छोडिदिनुपर्‍यो भनी हठपूर्वक बलप्रयोग गरी लङ्का कब्जा गरे। हे नाथ ! अब मैले गर्नुपर्ने कर्तव्य के हो ? लडाइँ गरौं या नगरौं ? आफैं विचार गरेर मलाई आज्ञा दिनुहोस्। यस किसिमको आफ्नो छोराको धर्मसम्मत उचित वाक्य सुनेर ऋषिराज विश्रवा यस प्रकार भन्न लागे ॥२१–२४॥

विश्रवा भन्दछन् – स्वर्गजस्तो विशाल कैलासपर्वतको चुचुरोनजिकै मेरो प्रतापबाट श्रीमहादेवको मित्र बनी वास गर्नु तिम्रा लागि उचित हुनेछ। यस कैलासको अलकापुरीमा नदीहरूमा उत्तम मन्दाकिनी नामकी नदी छिन्, यसै पवित्र तीर्थस्थल कैलासमा मानससरोवर पनि विराजमान छ ॥२५–२६॥

सनत्कुमार आज्ञा गर्नुहुन्छ – आफ्ना पिता विश्रवाको वचन सुनेर कोषपति यक्षराज कुबेर आफ्ना गुह्यकगणका साथ सुन्दर लङ्कापुरीलाई त्यागी कैलास पर्वतमा आई बसोबास गर्न लागे ॥२७॥

यसरी श्री पशुपतिपुराणमा गोकर्णेश्वरप्रतिष्ठापना नामक बीसौं अध्याय सकियो।
यहाँ पूर्वार्धखण्ड पूरा भयो।

# अथ एकविंशोऽध्यायः

दक्षिणगोकणप्रतिष्ठानम् (दक्षिण गोकर्णको पतिष्ठा)

सनत्कुमार उवाच

ततः स्वबान्धवैः सार्धं सर्वैश्चापि निशाचरैः। निवेश्य नगरीं लङ्कां मुमुदे स दशाननः ॥१॥
राज्याभिषेकमासाद्य पितामहकरच्युतम्। उद्योगं कारयामास दशास्यो भ्रातृसम्मतः ॥२॥
धनदं नरकं चाऽपि जित्वा पातालमेव च। सुरेन्द्रं प्रार्थयामास युद्धाय स दशाननः ॥३॥
जित्वा सुरेन्द्रं समरे मेघनादस्य मायया। अमरां तां पुरीं रम्यां प्रविवेश दशाननः ॥४॥
शृङ्गाग्रहारिणं दृष्ट्वा पूजितं वज्रपाणिना। उत्पाट्य स्वकरे कृत्वा मुमुदेऽतिशयं तदा ॥५॥
शतैरप्सरसां सार्धं रत्नानि सुबहूनि च। गृहीत्वा स्वबलैः सार्धं प्राप्तवान् स महोदधिम् ॥६॥
दक्षिणोदधिबेलोर्मिमालावलिसुमण्डिते। विद्रुमद्रुमसंघाते सन्ध्यासमयसन्निभे ॥७॥
मुक्ताफलसमाकीर्णे रत्नोपलविभूषिते। नागदानवनारीणां क्रीडास्थाने मनोरमे ॥८॥
शृङ्गाग्रहारिणं पुण्यं सुरेन्द्रभवनाद्धृतम्। त्रिकूटमूले संस्थाप्य सन्ध्यामास्ते दशाननः ॥९॥
सन्ध्यावन्दननिर्वृत्तो रावणो लोकरावणः। न शशाक समुद्धर्तुं वज्रकल्पमिव स्थितम् ॥१०॥
तत्यक्त्वा स्वपुरीं लङ्कां प्रविवेश दशाननः। शृङ्गाग्रहारिणं दृष्ट्वा वज्रकल्पमिव स्थितम् ॥११॥
इन्द्रोऽपि भगवान् स्वर्गं ब्रह्मणा भूरितेजसा। अभिषिक्तः स्वयं राज्यं पालयामास लीलया ॥१२॥
अथ हृष्टमना भूत्वा रावणो रुद्रभक्तिमान्। निर्ममे निलयं तस्य रत्नतोरणदीपितम् ॥१३॥
गोकर्णमेव संकल्प्य पूजनाद्रावणेन वै। स च दक्षिणगोकर्ण इति विख्यायते भुवि ॥१४॥
अद्यापि पूज्यते भक्त्या राक्षसैर्धर्मकाङ्क्षिभिः। कथितं सर्वमाख्यानं भवद्भिः परिपृच्छितम् ॥१५॥
इत्येवं कथितं शृङ्गे पुण्यात्पुण्यतरं शुभम्। कीर्तितं सनकेनेत्थं कुमारेण महात्मना ॥१६॥

इति श्रीपशुपतिपुराणे दक्षिणगोकर्णप्रतिष्ठापनो नाम एकविंशोऽध्यायः।

---

सनत्कुमार आज्ञा गर्नुहुन्छ – त्यसपछि आफ्ना दाज्यू भाइहरू र सम्पूर्ण राक्षसहरूका साथ लङ्कानगरीमा प्रवेश गरी बलवान् रावण अत्यन्त प्रसन्न भए। श्रीपितामहका हातबाट राज्याभिषेक पाइसकेपछि रावणले भाइहरूको समेत सल्लाह लिएर युद्ध गर्ने तरखर गरे। रावणले कुवेर, नरकासुर र पातालवासी सम्पूर्ण राक्षसहरूलाई समेत जितेर देवराज इन्द्रलाई पनि सङ्ग्रामका निम्ति हाँक दिए। मेघनादको मायाद्वारा सङ्ग्राममा इन्द्रलाई पनि जिती रमणीय अमरावती पुरीमा दशानन रावण प्रवेश गरे ॥१–४॥

हातमा वज्र लिने देवराज इन्द्रद्वारा सम्मानित भगवान् हरिणेश्वरको सिङको टुप्पो देखेर त्यसलाई उखलेर हातमा लिँदा रावण अत्यन्त नै प्रसन्न भए। सयौं अप्सराहरूका साथ धेरै रत्नहरू लिई आफ्ना सैन्यहरूसहित रावण समुद्रको किनारको समीपमा रहेको आफ्नो राजधानी लङ्काको समीप पुगे। दक्षिण समुद्रको किनारामा समुद्रका तरङ्गमालाका पंक्तिहरूद्वारा सुन्दर प्रवालवृक्षको समूह व्याप्त हुँदा सन्ध्याकालको जस्तो शोभा भएको, मुक्ताफलहरू लटरम्म भएको, रत्नमय शिलाविशेषले विभूषित त्रिकूटाचल पर्वतको फेदीमा, जहाँ नाग, दानव आदिका नारीहरूको मनोहर क्रीडा हुने गर्छन्, त्यहीं नै देवराज इन्द्रको दरबारबाट अपहरण गरेर ल्याइएको हरिणेश्वरको सिङको टुप्पो स्थापना गरी रावण सन्ध्योपासना गर्न लागे ॥५–९॥

सन्ध्यावन्दन आदि कर्म समाप्त गरी लोकरावण वीर रावण त्यस सिङको टुप्पोलाई उठाउन लागे, परन्तु वज्रतुल्य भै जमेको हरिणशृङ्गलाई तिनले उखेल्न सकेनन्। वज्रतुल्य भई जमेको हरिणको सिङको टुप्पो देखेर त्यसलाई त्यहीं छाडी रावणे आफ्नो राजधानी लङ्कामा प्रवेश गरे। देवराज इन्द्र अत्यन्त तेजस्वी ब्रह्माजीद्वारा अभिषिक्त भई सहजतापूर्वक आफैं नै राज्य पालन गर्न लागे ॥१०–१२॥

शिवभक्त रावणले अत्यन्त प्रसन्न भई गोकर्णेश्वर भगवान् शिवको रत्नमय तोरणहरूले धप्प बल्ने शिवालय बनाए। यहाँ गोकर्ण नै हुनुहुन्छ भन्ने संकल्प लिई रावणले गोकर्णको पूजा गरे, यसैले दक्षिणगोकर्ण नामले भगवान् शिव पृथ्वीमा प्रख्यात हुनुहुन्छ। आजसम्म पनि धर्म गर्न चाहने राक्षसहरू भक्तिपूर्वक गोकर्णको पूजा गर्दछन् ॥१३–१४॥

पुलस्त्य भन्नुहुन्छ – हे मुनि हो ! यहाँहरूले जुन कथा सोध्नुभएको थियो, त्यो सम्पूर्ण कथा मैले बताएँ। यस प्रकारले मृगेश्वरको सिङको विषयमा साधारण पुण्यभन्दा धेरै माथिको पुण्य दिने शुभ कथा बताइयो र यस कथाका वाचक महात्मा सनत्कुमार हुनुहुन्छ ॥१५–१६॥

यसरी श्री पशुपतिपुराणमा दक्षिणगोकर्ण प्रतिष्ठापननामक एक्काईसौं अध्याय सकियो।

# अथ द्वाविंशोऽध्यायः

हिमालयकुक्षौ विराजमानानां तीर्थानां कीर्तनम् (हिमालयका काखमा रहेका तीर्थहरूको वर्णन)

पुलस्त्य उवाच

नेनाम्ना मुनिना पूर्वं पालनात्पुण्यकर्मणा। अयं हि हिमवत्कुक्षौ नेपाल इति कीर्त्यते ॥१॥
अथान्यत्संप्रवक्ष्यामि तीर्थं नेपालसम्भवम्। प्रकामफलदं पुण्यं सर्वपापप्रणाशनम् ॥२॥
नदी विष्णुपदी चाऽपि चक्रमार्गा च निम्नगा। तथा मणिमती चाऽपि तिस्रः पुण्याः सरिद्वराः ॥३॥
तासां तु संप्रवक्ष्यामि शक्रतीर्थगतं फलम्। क्रमशः श्रूयतां पुत्र पृथक्कामफलप्रदम् ॥४॥
लुन्तिकाश्रममूले च रुद्रवत्याः समागमे। विष्णुपद्या जले स्नानात् शक्रश्च परितुष्यति ॥५॥
आर्या तीर्थोदके स्नानाद् ब्रह्मनद्याः समागमे। अर्यमा तुष्यते तत्र पार्श्वे तीर्थाभिषेकतः ॥६॥
अत ऊर्ध्वप्रदेशे तु कटके पर्वतस्य तु। तीर्थं ब्रह्मविलं गत्वा ब्रह्मा हि वरदो भवेत् ॥७॥
दर्यां सरलकीर्णायां मृगशृङ्गस्य भूभृतः। बलाकारूपमाश्रित्य यत्र धर्मो व्यवस्थितः ॥८॥
बलाकातीर्थमासाद्य ब्राह्मणं यस्तु भोजयेत्। नरके मग्नकायं स्वं पितरं त्रायते नरः ॥९॥
स्नायते सततं यस्तु तीर्थे पापप्रणाशने। प्रभावाद्धर्मराजस्य नरकं स न पश्यति ॥१०॥
बलाकोदकसम्भेदे विष्णुपद्या जले शुभे। स्नानात्कामवाप्नोति तुष्यन्ति पितरस्तथा ॥११॥
नद्या देवेन्द्रमार्गायाश्चन्द्रदीप्तिसमागमे। नवलिङ्गाह्वये तीर्थे स्नानात्सिद्धिरवाप्यते ॥१२॥
पादे पर्वतराजस्य मृगशृङ्गस्य चैव हि। अमोघशिखरे रम्ये यक्षासुरनिकेतने ॥१३॥
नाम्ना सुवर्णधाराख्या नदी यक्षविलोद्गता। तस्याः प्रपतने स्नानाद्यक्षलोकं स गच्छति ॥१४॥
सुवर्णधारासम्भेदे शक्रमार्गाजले शुभे। प्रयागफलमाप्नोति स्नानान्मासैकमात्रतः ॥१५॥

---

पुलस्त्य आज्ञा गर्नुहुन्छ – पुण्यात्मा ने नामका ऋषिद्वारा पहिले पालन गरेको हुनाले हिमालयको अञ्चलमा विद्यमान यो रमणीय देश नेपाल नामले प्रख्यात छ। अब नेपालका तीर्थहरूको अरू माहात्म्य पनि बताउने छु, जो प्रशस्त फल दिने, पुण्यमय एवं पापनाशक पनि छ। नेपालमा विष्णुमती, वाग्वती तथा मणिमती यी तीन पुण्यनदीहरू नदीमध्ये श्रेष्ठ छन् ॥१-३॥

हे पुत्र ! हे भीष्मजी! तिनीहरूको क्रमशः बेग्लाबेग्लै इच्छाअनुसार फलदिने तीर्थहरूको फल र शक्रतीर्थको फल पनि बताउनेछु। लुन्तिकाश्रमको मूल रुद्रमतीको दोभानमा र त्यस्तै विष्णुमतीको जलमा स्नान गर्नाले इन्द्र सन्तुष्ट हुनुहुन्छ। ब्रह्मनदीको दोभान र आर्यातीर्थको जलमा स्नान गर्नाले अर्यमा श्री सूर्यनारायण तथा पितृहरूका अधिष्ठातृदेवता सन्तुष्ट हुनुहुन्छ। यहाँभन्दा माथिको प्रदेशमध्ये सिद्धाचल वा कटकपर्वतमा रहेको ब्रह्मविल नामको ब्रह्माजीको तीर्थमा जाने मानिस ब्रह्माजीद्वारा वरदान प्राप्त गर्न समर्थ बन्दछ ॥४-७॥

मृगशृङ्गपर्वतको सल्लाका वृक्षहरूले ढाकिएको कन्दरामा बलाकानामक तीर्थ छ, जहाँ बकुल्लापन्छीको रूप धारण गरी धर्मराज राज गर्दछन्। त्यस बलाका तीर्थमा गई ब्राह्मणभोजन गराउँदछ, त्यो व्यक्ति नरकमा डुबेका पितृहरूको उद्धार गर्न समर्थ बन्दछ। जसले पापनाशक तीर्थमा जो सर्वदा स्नान गर्दछ, त्यस व्यक्तिले धर्मराजले प्रभावबाट नरककाफल भोग्नुपर्दैन। बलाकोदक तीर्थ र विष्णुमतीको सङ्गमको शुभ जलमा स्नान गर्नाले सम्पूर्ण मनोरथ पूर्ण भएको तीर्थसेवी साधकका सम्पूर्ण पितृहरू खुसी हुन्छन्। देवेन्द्र! मार्गा तथा चन्द्रदीप्तिको दोभानमा रहेको नवलिङ्ग नामको तीर्थमा स्नान गर्नाले पनि सिद्धि पाइन्छ ॥८-१२॥

पर्वतराज मृगशृङ्गको फेदीमा रमणीय यक्ष तथा असुरहरूको निवासभूमि भएको अमोघशिखरको फेदीमा सुवर्णधारा नामको नदी यक्षविलबाट निस्किएकी छन्। तिनै नदीको झर्नामा स्नान गर्नाले साधकले यक्षलोकमा निवास गर्न पाउँदछ। सुवर्णधाराको सङ्गममा रहेको इन्द्रमार्गा नदीको पवित्र जलमा एक महिनामात्र स्नान गर्नाले प्रयागस्नानको फल प्राप्त गर्न समर्थ बन्दछ ॥१३-१५॥

उत्पादिता विशालेन नदी यस्मात् प्रकीर्तिता। कावीरा चेति विख्यातं शिवक्षेत्रं भविष्यति ॥१६॥
अत्राऽपि श्रद्धया स्नानाच्छङ्करः परितुष्यति। सेवयेत्सततं यस्तु स्वर्गस्तस्य न दुर्लभः ॥१७॥
कावेर्युदकसम्भेदे मणिमत्या जले शुभे। स्नायते विधिना येन विशालभवनं व्रजेत् ॥१८॥
भद्राचलस्थिते रम्ये बकाश्रमसमीपतः। भद्रनद्या शुभे तीर्थे स्नानाद् गौरी प्रसीदति ॥१९॥
अत्र गत्वा शिलामूर्तिं योऽर्चयेत् सुरसुन्दरीम्। सेवयेत्सततं यस्तु तस्य स्वर्गफलं भवेत् ॥२०॥
वीरावतरणे तीर्थे रुद्रनद्याः समागमे। स्नायते विधिना येन वीरलोकं स गच्छति ॥२१॥
तत्रावतरते नित्यं हनुमान् पर्वपर्वसु। तीर्थाभिषेचनात्तत्र कामसिद्धिं स गच्छति ॥२२॥
वीरभद्रं समभ्यर्च्य येऽपि स्नायन्ति मानवाः। स्नानार्थं ये च गच्छन्ति तेऽश्वमेधफलेश्वराः ॥२३॥

इति श्रीपशुपतिपुराणोक्ततीर्थानन्दपुराणे द्वाविंशोऽध्यायः।

---

विशालले उत्पन्न गरेकी नदी हुनाले नै यो तीर्थ कावीरा तथा विशाला नामले प्रख्यात शिवतीर्थ हुनेछ। यस पुण्य तीर्थमा श्रद्धापूर्वक स्नान गर्दा भगवान् शिव सन्तुष्ट हुनुहुन्छ। सधैँभरि सेवा गरिरहनेहरूका लागि त स्वर्ग कत्ति पनि दुर्लभ छैन। कावीरा नदीको दोभानमा र मनोहरा वा मणिमतीको पवित्र जलमा जसले स्नान गर्दछ, त्यो व्यक्ति विशाल भवनमा पुग्दछ। भद्राचल पर्वतको निकटवर्ती अत्यन्त सुन्दर बकाश्रमको समीपमा भद्रनदीको शुभ पुण्यप्रद तीर्थमा स्नान गर्नाले देवी गौरी अत्यन्त सन्तुष्ट हुनुहुन्छ ॥१६-१९॥

यहाँ गई शिलामूर्तिमती सुन्दरीको जसले पूजा र सेवा गर्नेछ, त्यस साधकलाई पनि स्वर्गफल प्राप्त हुनेछ। यस्तै रुद्रवतीको दोभानमा रहेको वीरावतरण तीर्थमा जसले विधिपूर्वक स्नान गर्दछ, त्यो भक्त वीरहरूले प्राप्त गर्ने लोकमा प्राप्त हुन्छ। त्यस पवित्र तीर्थमा हरेक पर्व पर्वमा महावीर हनुमान्जी उत्पन्न हुनुहुन्छ, यस पुण्यप्रद तीर्थमा स्नान गर्नाले पनि भक्तहरूको सम्पूर्ण मनोरथ सिद्ध हुन्छ। यस तीर्थमा वीरभद्रको पूजा गरी जुन मनुष्यले स्नान गर्दछ र जुन मानिस स्नानका निम्ति प्रस्थान मात्र पनि गर्दछ भने ती दुवैथरी अश्वमेध यज्ञको फल प्राप्त गर्दछन् ॥२०-२३॥

यसरी श्रीपशुपतिपुराणमा बताइएको तीर्थानन्दपुराणमा बाइसौँ अध्याय सकियो।

## अथ तीर्थफलस्तुतिः प्रारभ्यते

सनत्कुमार उवाच

अथान्यत्सम्प्रवक्ष्यामि तीर्थं पूर्वोक्तमेव च। प्रकामफलदं पुण्यं सुरासुरनमस्कृतम् ॥१॥
वाग्वत्या मणिमत्याश्च सम्भेदे लोकपूजिते। गच्छामीत्युक्तमात्रेण भूयात् पापप्रणाशनम् ॥२॥
सम्भेदे मणिमत्यास्तु गन्तुं यावत्कृतं पदम्। तावद्वर्षशतं स्वर्गे मोदते शिवभक्तिमान् ॥३॥
वाग्वत्या मणिमत्याश्च सम्भेदे लोकपूजिते। संस्नाति विधिना यस्तु पुण्यवान् भुवि कीर्त्यते ॥४॥
तत्समीपे समुद्भूता रुद्रधारेति चोच्यते। कल्पिता देवदेवेन लोकानुग्रहकारिणा ॥५॥
भुक्तिमुक्तिप्रदं पुण्यं शिवमायोपलक्षितम्। रुद्रधारोदयं दृष्ट्वा सर्वपापैर्विमुच्यते ॥६॥
गयाया नैमिषाद्वापि कुरुक्षेत्राच्च पुष्करात्। स्नानं दशगुणं ज्ञेयं मणिमत्याः समागमे ॥७॥
ब्रह्मवक्त्रसमुद्भूता तीर्थमाता सरस्वती। सोममण्डलसम्भूता गङ्गा त्रैलोक्यपावनी ॥८॥
गौरीस्वेदसमुद्भूता कौशिकी कामदायिनी। वाग्वती तु सरिच्छ्रेष्ठा महादेव समुद्भवा ॥९॥
वाग्वत्यां सरिति प्रेम्णा यत्र यत्राऽवगाहते। तत्र तत्र फलं विद्याद्वाजपेयाश्वमेधयोः ॥१०॥
तत्सत्यमेव नियतं यदुक्तं ब्रह्मणा पुरा। श्रीशम्भुमुखजातायां किं न सम्भाव्यते फलम् ॥११॥
तदहं सम्प्रवक्ष्यामि स्तोत्रं कामफलप्रदम्। कीर्तनाच्छ्रवणाद्वापि पुण्यं भवति विस्तरम् ॥१२॥

॥ इति ॥

नेपालमुत्तमं काश्या विद्यते चोत्तमैः गुणैः। भूयो गयासमं पुण्यं तद्भूमिस्पर्शमात्रतः ॥

हेमाद्रिको तीर्थप्रकरण

मकरस्थे दिवानाथे वृषगे च बृहस्पतौ कुम्भयोगो भवेदादिप्रयागे तीर्थनायके ॥

# ४. अथ नेपालमाहात्म्यम्[1]

प्रथमोऽध्यायः

भगवतः पशुपतेः प्रादुर्भावः

(भगवान् पशुपतिनाथको प्रादुर्भाववर्णन)

श्रीगणेशाय नमः

नारायणं नमस्कृत्य नरं चैव नरोत्तमम्। देवीं सरस्वतीं चैव ततो जयमुदीरयेत् ॥१॥

सूत उवाच

जन्मेजयस्य यज्ञान्ते मुनयो ब्रह्मवादिनः। समागताः पुराणानां कथां चक्रुर्निरन्तरम् ॥२॥

मुनिमध्ये महातेजा जैमिनिः पर्यपृच्छत। मार्कण्डेयं महात्मानं भूय एव महाद्युतिम् ॥३॥

जैमिनिरुवाच

भगवान् सर्वधर्मज्ञ त्रिकालज्ञ मुनीश्वर। त्वत्तः श्रुतानि सर्वाणि क्षेत्राणि फलदानि च ॥४॥

नेपालं च महाक्षेत्रं भुक्तिमुक्तिफलप्रदम्। वद तत् कीदृशं क्षेत्रं श्रोतुमुत्सुकितं मनः ॥५॥

मार्कण्डेय उवाच

नेपालक्षेत्रमाहात्म्यं शृणु सावहितो मुदा। पीठानां परमं पीठं क्षेत्राणां क्षेत्रमुत्तमम् ॥६॥

श्लेष्मान्तकवनं तस्य पुरा नाम प्रतिष्ठितम्। शालैस्तालैस्तमालैश्च हिन्तालैः परिपूरितम् ॥७॥

खर्जूरैर्नागरङ्गैश्च बीजपूरैश्च मण्डितम्। नानानिर्झरणोपेतं नानापक्षिनिनादितम् ॥८॥

---

नारायण, नर, नरोत्तम, देवी र सरस्वतीलाई नमस्कार गरेर त्यसपछि जय भनोस् अथवा जयकाव्य महाभारतको चर्चा गर्नुपर्छ ॥१॥

सूतजी भन्नुहुन्छ – जन्मेजयको यज्ञको समाप्तिमा ब्रह्मवादी मुनिहरूले आएर निरन्तर पुराणको कथा सुनाए। मुनिहरूमध्ये ठूलो तेज भएका जैमिनिले चहकिलो कान्ति भएका महात्मा मार्कण्डेयलाई फेरि प्रश्न गरे ॥२–३॥

जैमिनि सोध्नुहुन्छ –हे भगवान् मुनीश्वर! सबै धर्म जान्ने तिनै कालका ज्ञाता तपाईंबाट सबै फल प्रदान गर्ने क्षेत्रहरूको महिमा श्रवण गरिसकेका छौं। अब भुक्ति, मुक्ति फल दिने महाक्षेत्र नेपाल कुन किसिमको भन्ने कुरा बताउनुहोस्। मेरो मन नेपालको महिमा श्रवण गर्न अत्यन्त उत्कण्ठित छ ॥४–५॥

मार्कण्डेय भन्नुहुन्छ – पीठहरूमा पनि ठुलो पीठ र क्षेत्रहरूमा पनि ठूलो क्षेत्र मानिएको नेपालको माहात्म्य सहर्ष र सावधान भएर सुन्नुहोस्। साल, ताल, तमाल, हिन्तालहरूले परिपूर्ण, खजूर, सुन्तला, बिमिराहरूले सिँगारिएको, विभिन्न झरनाहरू भएको र विभिन्न पक्षीहरूको शब्दले निनादित नेपालको नाम सर्वप्रथम श्लेष्मान्तक वन रहेको थियो ॥६–८॥

[1] हिमवत्खण्डको गरिमालाई ध्यानमा राखेर नेपाल र भारतबाट प्रकाशित नेपालमाहात्म्यका विभिन्न संस्करणहरूको अनुशीलन गरी परिष्कृत स्वरूपमा यहाँ सानुवाद समावेश गरिएको छ। यसका पुष्पिका–वाक्यहरूमा स्कन्दपुराणको हिमवत्खण्डबाट उद्धृत भनी लेखिएको भएता पनि योगीजीद्वारा सम्पादित हिमवत्खण्डमा विभिन्न शैलीमा यसभित्रका कतिपय विषयको वर्णन रहेता पनि यहाँ प्रस्तुत गरिएका अध्याहरू रहेका छैनन्। हिमवत्खण्डको विषयवस्तु अनुशीलन गरी यो माहात्म्य तयार पारेको हो वा यस ग्रन्थका अन्य पाण्डुलिपिहरूबाट उद्धृत गरिएको हो भन्ने विषय अनुसन्धेय छ।

वाग्वत्याः सरितस्तीरे सर्वत्र कुसुमान्वितम्। श्लेष्मान्तकवनं दृष्ट्वा पार्वत्या सह शङ्करः ॥९॥
तुष्टोऽभूदतुलां प्रीतिं लेभे च मुनिसत्तम। काशीं विहाय कैलासमण्डलं सुमनोहरम् ॥१०॥
पार्वत्या सहितो रुद्रः श्लेष्मान्तकवनं ययौ। अलक्षितो निजगणैर्मृगरूपं विधाय च ॥११॥
मृग्या भवान्या सहितो रेमे तस्मिन् वने मुदा। श्लेष्मान्तकवनं रुद्रे प्रविष्टे पार्वतीयुते ॥१२॥
अलक्षितः सुरगणैर्जगदासीत् समाकुलम्। ब्रह्मादयः सुरगणा मुनिभिर्नारदादिभिः ॥१३॥
त्रैलोक्यं बभ्रमुः सर्वे रुद्रान्वेषणतत्पराः। पुरे ग्रामे वने वाऽपि नद्यामुपवनेषु च ॥१४॥
पर्वतेषु समस्तेषु ददृशुर्नैव शङ्करम्। भ्रमन्तो ह्यलसाः श्रान्ता हिमवन्तं नगेश्वरम् ॥१५॥
जग्मुर्मुनिगणैः सार्द्धं शङ्करेऽर्पितमानसाः। कुक्षौ हिमवतो रम्ये श्लेष्मान्तकवने तदा ॥१६॥
एकशृङ्गं त्रिनेत्रं च पुष्टाङ्गमतिसुन्दरम्। मृगरूपधरं रुद्रं मृगीयूथसमन्वितम् ॥१८॥
तथाऽपि न जहौ रुद्रो मृगरूपं तपोधन। चक्रुस्ते मन्त्रणां विप्र शक्रविष्णुविरञ्चयः ॥१९॥
शृङ्गं धृत्वा मृगस्यास्य स्थापयामो वशे वयम्। इति कृत्वा मतिं देवा ब्रह्मविष्णुसुरेश्वराः ॥२०॥
बलेन जगृहुः शृङ्गं पाणिभ्यां मृगरूपिणः। धृते शृङ्गे सुरैः शीघ्रं मृगरूपी महेश्वरः ॥२१॥
उत्पफाल ततो जातं शृङ्गं खण्डचतुष्टयम्। उत्पत्य च महारुद्रः परे पारे मनोहरे ॥२२॥
वाग्वत्याः सरितस्तीरे नाम्ना पशुपतिः स्मृतः। ततो ब्रह्मादयो रुद्रमूचुः प्राञ्जलयः सुराः ॥२३॥
व्रज काशीं महारुद्र कैलासं वा मनोहरम्। त्वया विना जगच्छून्यं भाति नः सचराचरम् ॥२४॥
इत्याकर्ण्य वचो रुद्रो जगाद त्रिदशान् प्रति। स्थास्याम्यत्र वने रम्ये न यास्यामि च कुत्रचित् ॥२५॥
स्थितोऽहं पशुरूपेण श्लेष्मान्तकवने यतः। अतः पशुपतिर्लोके मम नाम भविष्यति ॥२६॥
ये मां पशुपतिं देवा द्रक्ष्यन्ति मनुजा भुवि। पशुजन्म न तेषां तु मत् प्रसादाद् भविष्यति ॥२७॥
मृगेन्द्रशिखराद्रम्यां मम हासाद्विनिर्गताम्। वाग्वतीं ये च द्रक्ष्यन्ति ते नराः पुण्यभागिनः ॥२८॥

---

हे श्रेष्ठ मुनि ! वाग्वती नदीको तीरमा जताततै फूलैफूल भएको श्लेष्मान्तक वनलाई देखेर पार्वतीका साथमा शङ्कर खुशी हुनुभयो र प्रशस्त प्रेम पनि पाउनुभयो। काशी र सुन्दर कैलाशमण्डल छोडेर पार्वतीका साथ रुद्र श्लेष्मान्तक वनमा जानुभयो। आफ्ना गणहरूद्वारा पनि नदेखिईकन मृगरूप लिएर मृगीरूप लिएकी भवानीका साथ त्यस वनमा आनन्दपूर्वक रमाउनुभयो। पार्वतीलाई लिएर श्लेष्मान्तक वनमा रुद्र पसेपछि देवताहरूले शङ्करलाई नदेख्दा सारा संसार नै आकुलव्याकुल भयो। नारदादि मुनिहरूका साथ रुद्रलाई खोज्न तत्पर भएका सबै ब्रह्मादि देवताहरू तीनै लोक घुमे। शहर, गाउँ, वन, नदी र उपवनहरूमा त्यस्तै सबै पर्वतहरूमा पनि शङ्करलाई देखेनन्। हिमालय पर्वत घुम्दा घुम्दा थाकेका, आलस्यले सताइएका, शङ्करमै मन दिएका मुनिहरूका साथ हिमालय पर्वतको काखमा रहेको श्लेष्मान्तक वनमा गए ॥९-१६॥

त्यस बेला एक सिङ र तीन वटा आँखा भएका, मोटो र राम्रो मृगको रूप लिएका र मृगको बथानमा मिलेका रुद्रलाई र मृगको रूप लिएकी पार्वतीलाई सबैले देखे र आश्चर्य भए। हे तपोधन ! तैपनि रुद्रले मृगरूपले मृगरूपलाई छोड्नुभएन अनि इन्द्र, विष्णु र ब्रह्माले विचार गरे। यस मृगको सिङ पक्रेर हामीहरूले यसलाई वशमा राखौँ भन्ने विचार गरेर ब्रह्मा, विष्णु र इन्द्र देवताले बलपूर्वक दुवै हातले मृगरूपी शिवको सिङ पक्रे। देवताहरूले सिङ पक्रेपछि मृगरूपी महेश्वर उफ्रिए त्यसपछि त्यो सिङ त चार टुक्रा भयो। महारुद्र उफ्रेर पल्लोपट्टि वाग्वती नदीको मनोहर तीरमा पशुपति नामले सम्बोधन गरिनुभयो। त्यसपछि हात जोडेका ब्रह्मादि सबै देवताहरूले रुद्रलाई भने - हे महारुद्र ! काशीमा हिँड्नुहोस् अथवा मनोहर कैलाशमा हिँड्नुहोस्। तपाईंविना हामीहरूलाई चराचर जगत् शून्य भएजस्तो लाग्छ ॥१७-२४॥

यस्तो कुरा सुनेर रुद्रले देवताहरूप्रति भन्नुभयो कि म यहीं राम्रो वनमा बस्छु, कहीं पनि जान्न। म यो श्लेष्मान्तक वनमा पशुरूपले बसेको छु। यसैले मेरो नाम संसारमा पशुपति भनी प्रकाशित हुनेछ। पृथिवीमा म पशुपतिलाई जुन देवताहरूले हेर्नेछन्, मेरो अनुग्रहबाट तिनीहरूले पशुका रूपमा जन्म लिनु पर्नेछैन। मेरो हाँसोबाट निस्केकी वाग्वतीलाई मृगेन्द्रशिखर पर्वतमा गएर दर्शन गर्ने मानिसहरू पुण्यवान् हुनेछन् ॥२५-२८॥

मृगेन्द्रशिखरं गत्वा पीत्वा वै वाग्वतीजलम्। द्रक्ष्यन्ति मां पशुपतिं न ते स्युः पशवो द्विज ॥२९॥
पशुकुण्डे नरः स्नात्वा पदाऽऽक्रम्य मृगस्थलीम्। किरातेश्वरमभ्यर्च्य सर्वपापैः प्रमुच्यते ॥३०॥
कार्तिके कृष्णपक्षस्य चतुर्दश्यां मृगस्थलीम्। प्रदक्षिणां करिष्यन्ति ते नराः स्वर्गगामिनः ॥३१॥
इन्द्रेण विष्णुना धात्रा यद्यच्छृङ्गं धृतं मम। आत्माभिलषिते स्थाने तल्लिङ्गं स्थाप्यतां मम ॥३२॥
एतस्मिन्नन्तरे गौरी महादेवमुवाच तम्। वाग्वत्याः सरितस्तीरे स्थास्यामि तव सन्निधौ ॥३३॥
श्रुत्वा गिरिसुतावाक्यमुवाच गिरिजापतिः। अत्यन्तगुप्तं गिरिजे कथयामि तवाग्रतः ॥३४॥
पूर्वभवे दक्षकन्या सती नाम्ना व्यवस्थिता। अपमानेन तातस्य प्राणास्त्यक्तास्त्वया शिवे ॥३५॥
मया स्नेहेन ते देवि कुणपं कण्ठसंस्थितम्। कृत्वा महीपर्यटनं कृतं शोकाकुलेन च ॥३६॥
शोकाकुलं च मां दृष्ट्वा विष्णुः स्नेहवशेन मे। सुदर्शनेन चिच्छेद तवाङ्गानि स्थले स्थले ॥३७॥
तवाङ्गं पतितं गुह्यं वाग्वतीतटिनीतटे। मृगस्थल्या उदीच्यां तु तत् पीठं परमं महत् ॥३८॥
मम वात्सल्यतो यस्मात् स्थातुमिच्छसि पार्वति। तस्मात् ते वत्सला नाम भविष्यति वरानने ॥३९॥
ममाग्नेय्यां सदा तिष्ठ ममाज्ञातो महेश्वरि। वाग्वत्याः पयसि स्नात्वा दृष्ट्वा त्वां वत्सलां शिवे ॥४०॥
द्रक्ष्यन्ति मां नरा ये वै ते स्युः कैलासगामिनः। मत्सन्निधौ तेऽन्तिके वा गुह्येशीसन्निधावपि ॥४१॥
ये जपन्ति नरा भक्त्या तेषां सिद्धिर्भविष्यति। इत्याकर्ण्य वचो देवी शङ्करस्य शुभाशयम् ॥४२॥
स्थिता सा वत्सला तत्र वाग्वत्याः सरितस्तटे। विष्णुस्तच्छृङ्गमादाय पशुपाशविमोचनम् ॥४३॥
उत्तरे वाग्वतीतीरे सुतुङ्गे सुमनोहरे। स्थापयामास तल्लिङ्गं सर्वपापैः प्रमुच्यते ॥४४॥
भाद्रमासे त्वमावास्यां तिथौ गोकर्णसन्निधौ। ये पिण्डान् पातयिष्यन्ति तारयिष्यन्ति ते पितॄन् ॥४५॥
भृगुपातं करिष्यन्ति गोकर्णेश्वरसन्निधौ। तेषां मनोरथाः सर्वे भविष्यन्ति न संशयः ॥४६॥
ब्रह्माऽपि शृङ्गमादाय तदा दक्षिणसारणम्। गत्वा संस्थापयामास गोकर्णेश्वरमुत्तमम् ॥४७॥
तद्दक्षिणं तु गोकर्णं क्षेत्राणां क्षेत्रमुत्तमम्। इन्द्रोऽपि शृङ्गमादायामरावत्यां द्विजोत्तम ॥४८॥
स्थापयामास तल्लिङ्गं सर्वकामफलप्रदम्। वाग्वत्याः सरितस्तीरे पशुपाशविमोचनम् ॥४९॥
एवं श्लेष्मान्तकवने नाम्ना पशुपतिः स्मृतः।

---

हे द्विज ! मृगेन्द्रशिखरमा गएर वाग्वतीको जलपान गरी जसले म पशुपतिको दर्शन गर्नेछन्, तिनीहरूले पशुरूपमा जन्म लिनुपर्ने छैन। पशुकुण्डमा नुहाएर मृगस्थलीलाई पाउले नाघी किरातेश्वरको पूजा गरेपछि मानिस सम्पूर्ण पापबाट मुक्त हुन्छ। कार्तिक कृष्ण चतुर्दशीमा जसले मृगस्थलीको प्रदक्षिणा गर्नेछन् ती स्वर्गमा जानेछन्। इन्द्र, विष्णु र ब्रह्माले मेरो जुन जुन सिङ लिएका छन्, तिनलाई इच्छा लागेको ठाउँमा स्थापना गरून् ॥२९–३२॥

यसै बीचमा गौरीले उनै महादेवलाई भनिन् – वाग्वती नदीको तीरमा तपाईंको समीपमा म पनि बस्नेछु। पर्वतकी छोरी पार्वतीको बोली सुनेर गिरिजापति शिवले भन्नुभयो – हे गिरिजा ! तिम्रो अगाडि अत्यन्त गोपनीय कुरा भन्दैछु। हे पार्वती ! पहिलो जन्ममा तिमी सती नाम गरेकी दक्षकी छोरी भएर जन्मेकी थियौ, त्यस जन्ममा बाबुको अपमानले तिमीले प्राणत्याग गरेकी थियौ। हे देवी ! शोकले आकुल भएको मैले तिम्रो स्नेहले गर्दा लाश कण्ठमा धारण गरेर पृथ्वी भ्रमण गरें। विष्णुले शोकले आत्तिएको मलाई देखेर मेरो माया लाग्दा सुदर्शनले तिम्रा लाशका अङ्गलाई ठाउँठाउँमा काट्नुभयो ॥३३–३७॥

हे देवी ! वाग्वती नदीको तीरमा मृगस्थलीको उत्तरपट्टि तिम्रो गुह्य पतन भयो। त्यसैले त्यो पीठ परम महिमाले युक्त छ। हे पार्वती ! मेरै वात्सल्यले गर्दा तिमी बस्न चाहन्छ्यौ। त्यसैकारण हे सुन्दर अनुहार भएकी पार्वती ! तिम्रो नाम वत्सला हुनेछ। हे महेश्वरी ! मेरै आज्ञाले मेरै आग्नेयपट्टि सधैं बस। हे पार्वती ! जसले वाग्वतीको जलमा नुहाएर तिमी वत्सलाको दर्शन गरी मेरो दर्शन गर्नेछन्, ती मानिस कैलासमा जानेछन्। मेरो नजिकमा वा तिम्रो नजिकमा अथवा गुह्येश्वरीको नजिकमा पनि जुन मानिसहरू भक्तिले नामजप गर्नेछन्, तिनीहरूको सिद्धि हुनेछ। पार्वतीले शङ्करको यस्तो शुभ आशयको वचन सुनेर ती वत्सला त्यहीं वाग्वती नदीको तीरमा बसिन्। विष्णुले त्यो सिङ लिएर अग्लो र राम्रो वाग्वतीतीरको उत्तरपट्टि जीवको कर्मबन्धनलाई छुट्याउने शिवलिङ्गको स्थापना गर्नुभयो। त्यसको दर्शन गर्ने मानिस पापबाट मुक्त हुन्छ। भदौको औंसी तिथिमा गोकर्णको नजिकमा जसले पिण्ड प्रदान गर्नेछन्, तिनीहरूले पितृहरूलाई तार्नेछन्। गोकर्णेश्वरको नजिकमा जसले भृगुपात गर्नेछन्, निश्चय नै तिनीहरूका सबै इच्छा पूर्ण हुनेछन् ॥३८–४६॥

ब्रह्माजीले पनि सिङ लिएर दक्षिणसारणमा गई उत्तम गोकर्णेश्वरको स्थापना गर्नुभयो। त्यो दक्षिणगोकर्ण क्षेत्रहरूमध्ये पनि उत्तम क्षेत्र हो। हे द्विजोत्तम ! इन्द्रले पनि सिङ लिएर अमरावतीमा सबै इच्छाको फल दिने लिङ्गको स्थापना गरे। वाग्वती नदीको तीरमा जीवको कर्मबन्धलाई छुट्याउने श्लेष्मान्तक वनमा भगवान् शिव पशुपति नामले प्रसिद्ध हुनुभयो ॥४७–४९½॥

जैमिनिरुवाच

पार्वत्या सहिते रुद्रे स्थिते श्लेष्मान्तके वने ॥५०॥
किमकारि सुरैः सर्वैस्तन्ममाचक्ष्व सुव्रत ।

मार्कण्डेय उवाच

स्थिते पशुपतौ तत्र सर्वे ये देवता गणाः ॥५१॥
स्वस्वक्षेत्रं परित्यज्य श्लेष्मान्तकवने स्थिताः । राढातः कालिका देवी श्लेष्मान्तकवने गता ॥५२॥
जयवागीश्वरी नाम्ना प्रसिद्धा क्षेत्रसत्तमे । येऽस्या भक्ता भविष्यन्ति यास्यन्ति परमां गतिम् ॥५३॥
याः स्त्रियश्चार्पयिष्यन्ति देव्यै हंसं मनोहरम् । अनुयास्यन्ति ताः सर्वाः प्रियं यमपुरं गतम् ॥५४॥
त्रिपुरातः समायाता राजराजेश्वरी शिवा । अस्या दर्शनमात्रेण दरिद्रोऽतिसुखी भवेत् ॥५५॥
पातालमूलमुत्सृज्य वासुकिर्नागसत्तमः । उत्तरे देवदेवस्य स्थितो निजगणैर्वृतः ॥५६॥
सौराष्ट्रदेशादागत्य बुद्धरूपी जनार्दनः । मणिधातौ गिरिवरे तपस्यामकरोद्वशी ॥५७॥
तपस्यतो गिरिवरे पञ्चाग्निज्वालया भृशम् । प्रस्वेदान्निर्गता सद्यो नाम्ना मणिमती नदी ॥५८॥
तपस्यां कुर्वतस्तस्य बुद्धस्य गिरिजा तदा । तुष्टा बभूव प्रकटा नाम्ना सा वज्रयोगिनी ॥५९॥
उवाच गिरिजा बुद्धं वरं वरय सुव्रत । श्रुत्वा गिरिसुता वाक्यमुवाच भगवाँस्तदा ॥६०॥
सदाचारपरा लोका ह्यस्मिन् देशे भवन्त्विति । बुद्धवाक्यं शिवा श्रुत्वा प्राह तं भक्तवत्सला ॥६१॥
शिवेन रचितं क्षेत्रं भवताऽपि तपः कृतम् । अतः क्षेत्रोत्तमे बुद्ध शैवाचारपरायणाः ॥६२॥
बौद्धाचारपरा लोका भविष्यन्ति न संशयः । वाग्वत्या मणिमत्याश्च सङ्गमे क्षेत्रसत्तमे ॥६३॥
शिवधर्मपरो भूत्वा लिङ्गं संस्थापय प्रभो । श्रुत्वा गिरिसुतावाक्यं बुद्धः कारुणिकस्तदा ॥६४॥
सङ्गमे स्थापयामास लिङ्गं कारुणिकेश्वरम् । भाद्रमासे सिताष्टम्यां लिङ्गं कारुणिकेश्वरम् ॥६५॥
ये द्रक्ष्यन्ति नरा भक्त्या सर्वे ते स्वर्गगामिनः । तस्मिन् प्रदेशे गिरिजा जाता वै वज्रयोगिनी ॥६६॥
भक्तलोकहितार्थाय स्थिता तत्रैव पर्वते । एवं च देवताः सर्वाः श्लेष्मान्तकवने शुभे ।
तदा पशुपतिप्रेम्णा नानास्थानेषु संहिताः ॥६७॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये पशुपतिप्रादुर्भावो नाम प्रथमोऽध्यायः ।

---

जैमिनिले भन्नुभयो – हे सुव्रत ! पार्वतीका साथ रुद्र श्लेष्मान्तक वनमा बसेपछि सबै देवताहरूले के गरे ? त्यो मलाई भन्नुहोस् ॥५०½॥

मार्कण्डेयजीले भन्नुभयो – त्यहाँ पशुपति बसेपछि सबै देवताहरू आआफ्नो ठाउँ छोडेर श्लेष्मान्तक वनमा बसे । राढाबाट कालिका देवी श्लेष्मान्तक वनमा गइन् र त्यस उत्तम क्षेत्रमा जय वागीश्वरी नामले प्रसिद्ध भइन् । जो यिनको भक्त हुनेछन् ती परम गतिमा प्राप्त हुनेछन् । जुन नारीहरूले जयवागीश्वरीलाई मनोहर हंस चढाउनेछन्, ती सबै यमपुरमा गएका आफ्ना पतिका अनुयायिनी हुनेछन् । त्रिपुराबाट पाशुपतक्षेत्रमा राजराजेश्वरी देवी आइन् । यिनको दर्शनले मात्रै दरिद्र पनि अत्यन्त सुखी हुनेछ ॥५१–५५॥

पाताल छोडेर श्रेष्ठ वासुकिनाग आफ्ना गणहरूले घेरिएर देवदेव पशुपतिको उत्तरपट्टि विराजमान भए । सौराष्ट्र देशबाट आएर इन्द्रियलाई वश गरेका बुद्धावतार विष्णुले पनि मणिधातुपर्वतमा तपस्या गरे । बुद्धावतारले पर्वतमा तपस्या गर्दा ठूलो पञ्चाग्निज्वालाबाट निस्केको उनको पसिनाले मणिमती नाम गरेकी नदी प्रकट भइन् ॥५६–५८॥

तपस्या गर्ने बुद्धको तपस्याबाट गिरिजा खुसी भइन् र वज्रयोगिनी नामले ती प्रकट भइन् । तिनले बुद्धलाई हे सुव्रत ! वर माग भनिन् । गिरिजाको वाक्य सुनेर भगवान्ले यस देशमा सदाचारी मानिस होऊन् भन्नुभयो । बुद्धको बोली सुनेर भक्तवत्सला पार्वतीले भन्नुभयो – यो क्षेत्र शिवद्वारा रचिएको हो, यहाँ तपाईंले पनि तपस्या गर्नुभयो । यसै कारणले हे बुद्ध ! यो उत्तम ठाउँमा शैवको आचारमा लागेका र बौद्धको आचारमा लागेका मानिसहरू निश्चय नै हुनेछन् । हे प्रभु ! वाग्वती र मणिमतीको दोभान भएको उत्तम क्षेत्रमा शिवधर्ममा लागेर लिङ्गको स्थापना गर्नुहोस् ॥५९–६३½॥

पार्वतीको बोली सुनेपछि कारुणिक बुद्धले त्यस दोभानमा कारुणिकेश्वर लिङ्गको स्थापना गर्नुभयो । जुन मानिसहरू भक्तिपूर्वक यस लिंगलाई हेर्दछन्, ती निश्चय नै स्वर्ग जानेछन् । त्यस ठाउँमा गिरिजा वज्रयोगिनीका रूपमा उत्पन्न भइन् र त्यस पर्वतमा भक्तजनहरूको हितका लागि रहिन् । यसरी असल श्लेष्मान्तक वनमा पशुपतिको प्रेमले गर्दा सबै देवताहरू विभिन्न ठाउँमा रहेका थिए ॥६४–६७॥

स्कन्दपुराण अन्तर्गतको नेपालमाहात्म्यमा पशुपति उत्पन्न भएको पहिलो अध्याय परिपूर्ण भयो ।

# द्वितीयोऽध्यायः

श्लेष्मान्तकवने देवानामुपस्थितिः (श्लेष्मान्तकवनमा देवताहरूको उपस्थिति)

जैमिनिरुवाच

केषु स्थानेषु के देवाः श्लेष्मान्तकवने स्थिताः । वद सर्वं महाभाग श्रोतुमिच्छा प्रजायते ॥१॥

मार्कण्डेय उवाच

सन्ति तीर्थान्यनेकानि श्लेष्मान्तकवने शुभे । देवताः सकलास्तत्र स्थिता भक्तवरप्रदा ।
तथाऽपि मुख्यतीर्थानां कानिचित् कथयामि ते ॥२॥
दोलागिरौ चम्पकवृक्षनिर्गतो भक्तानुकम्पी गरुडध्वजो हरिः । यन्नामसङ्कीर्तनतो भुजङ्गमो महाविषो निर्विषतामुपैति ॥३॥

जैमिनिरुवाच

कथं चम्पकवृक्षात् तु निर्गतो गरुडध्वजः । तद्ब्रूहि त्वं महाभाग श्रोतुकामस्तपोधनः ॥४॥

मार्कण्डेय उवाच

तपोधन कथामेतां मत्तः सावहितः शृणु । आसीत् सुदर्शनः कश्चित् तापसः कोपनः शुचिः ॥५॥
दोलागिरिवरे चक्रे तपोवनमनुत्तमम् । तस्यैका कपिला धेनुः कामधेनुरिवापरा ॥६॥
तस्या दुग्धेन स मुनिर्हव्यकव्यादिकं स्वयम् । प्राणयात्रां च विदधे यतात्माऽतिथिपूजकः ॥७॥
एकदा कपिला तस्य भ्रमन्ती चम्पके गता । चम्पकाद्बहिरागत्य पुरुषः कोऽपि शोभनः ॥८॥
तस्या दुग्धं स्वयं पीत्वा चम्पकाभ्यन्तरं ययौ । तस्या दुग्धं मुनिर्नैव लेभे यत्नपरायणः ॥९॥
याति चम्पकमूलं सा क्षीरं च पुरुषः पपौ । अलब्ध्वा कपिलाक्षीरं मुनिर्वै सप्त वासरान् ॥१०॥
चुकोपातीव सङ्क्रुद्धो वचनं चेदमब्रवीत् । यः पिबत्येव कपिलादुग्धं हव्यनिमित्तकम् ॥११॥
शिरश्छेत्स्यामि दुर्बुद्धेर्यद्यहं तपसो निधिः । इत्युक्त्वा सनकैर्विप्रः कपिलापृष्ठतो ययौ ॥१२॥
अलक्षिते तरुतले कपिला चम्पकं ययौ । चम्पकाद् बहिरागत्य कपिलायाः पपौ पयः ॥१३॥
यावत् पीत्वा तरुतलं तावत् स तपसो निधिः । शिरश्चिच्छेद खड्गेन पुरुषस्यातिकोपनः ॥१४॥

---

जैमिनि भन्नुहुन्छ – हे महाभाग । श्लेष्मान्तक वनमा कुन ठाउँमा कुन देवता रहे, ती सबै कुरा बताउनुहोस्, मलाई सुन्ने इच्छा पैदा भएको छ ॥१॥

मार्कण्डेयले भन्नुभयो – शुभ श्लेष्मान्तक वनमा अनेकौं तीर्थहरू छन् त्यहाँ भक्तजनलाई वर दिने सबै देवताहरू रहेका छन्। तीमध्ये केही मुख्य तीर्थहरू तपाईंलाई भन्दछु। दोलागिरिमा चाँपको रुखबाट निस्केका भक्तलाई दया गर्ने गरुडध्वज हरि हुनुहुन्छ। जसको नाम कीर्तन गर्नाले प्रशस्त विष भएको सर्प पनि विषै नभएको जस्तो हुन्छ ॥२–३॥

जैमिनिले भन्नुभयो – तपस्या नै धन भएका हे महाभाग कसरी चाँपको रुखबाट गरुडध्वज निस्कनुभयो त्यो भन्नुहोस्, सुन्न इच्छा गर्दछु ॥४॥

मार्कण्डेयले भन्नुभयो – हे तपोधन । सावधानपूर्वक मबाट यो कथा सुन्नुहोस् । कुनै सुदर्शन नामका रिसाहा, पवित्र तपस्वी थिए। तिनले दोलागिरिमा श्रेष्ठ तपोवन बनाए। तिनकी दोस्री कामधेनु जस्ती कपिला गाई थिइन्। संयमी र अतिथिको सत्कार गर्ने ती मुनिले तिनै कपिला गाईको दूधले हव्य कव्य आदि आफैं गर्थे र जीवन पनि धानेका थिए। एकदिन तिनकी कपिला गाई घुम्दै चम्पक वनमा गइन्, चाँपको रुखबाट कुनै राम्रा पुरुष बाहिर आएर ती गाईको दूध पिई चाँपको रुखभित्र प्रवेश गरे। धेरै कोसिस गर्दा पनि मुनिले ती गाईको दूध पाएनन् ॥५–९॥

ती गाई चाँपको फेदमा जान्छिन् दूध पुरुषले पिउँछ। यसै क्रममा सात दिनसम्म कपिलाको दूध नपाएर मुनिले ज्यादै रिसाई यसरी भने – यदि म तपोनिधि हुँ भने 'जसले हव्यका लागिको कपिलाको दूध पिउँछ त्यस मूर्खको टाउको काट्नेछु' यति भनेर ब्राह्मण बिस्तार बिस्तार कपिलाको पछि लागे ॥१०–१२॥

ब्राह्मण नदेखिने भएपछि कपिला चाँपको रुखमुनि गइन् र पुरुषले चाँपको रुखबाट बाहिर आएर कपिलाको दूध पान गऱ्यो। जब रुखको फेदमा दूध पिएर पुरुष बसिरहेको थियो, त्यसबेला अत्यन्त रिसाएका ती मुनिले पुरुषको टाउको तरवारले काटिदिए ॥१३–१४॥

विच्छिन्नशिरसस्तस्य पुरुषस्य तदा वपुः। शङ्खचक्रगदापद्मसमायुक्तं बभूव ह ॥१५॥
गरुडोपरि तं दृष्ट्वा विशिरस्कं तदा मुनिः। विषण्णोऽभवदत्यन्तं किं कृतं च मया पुनः ॥१६॥
गर्हयामास चात्मानं भूयो भूयस्तपोधनः। मूर्च्छामवाप महतीं संज्ञां लब्ध्वा तपोधनः ॥१७॥
निधनायोद्यतः सद्यः प्रायश्चित्तं चराम्यहम्। मरणायोद्यतं दृष्ट्वा प्राह नारायणो मुनिम् ॥१८॥
अनि टाउको काटिएका ती पुरुषको शरीर शङ्ख, चक्र, गदा र पद्मले सुहाइरहेको थियो ॥१५॥
गरुडमाथि टाउको नभएका ती पुरुषलाई देखेर मैले अपराध गरेँ भन्दै मुनि ज्यादै खिन्न भए ॥१६॥
ती तपोधनले बारम्बार आफूलाई निन्दा गरी कडा मूर्छामा परे। त्यसपछि होशमा आए ॥१७॥
प्रायश्चित्त गर्छु भनेर उत्तिखेरै मर्न तयार भए। उनलाई मर्न लागेको देखेर नारायणले भन्नुभयो ॥१८॥
माभैषीस्त्व मुनिश्रेष्ठ मा विषादो भवत्विति। त्वया कृतं सम्यगेव तुष्टोऽहं ते तपोधन ॥१९॥
भयं त्यज मुनिश्रेष्ठ वरं वरय सुव्रत। निशम्य नारायणवाक्यमुत्तमं तपोधनो भीतिमुदस्य तत्क्षणात्।
कृताञ्जलिः प्राह महापकारिणे वरं ददासीश विडम्बनं हि तत् ॥२०॥
अधमं मां दुरात्मानं कर्म चाण्डालतां गतम्। सुदर्शनेन चक्रेण जहि हे मधुसूदन ॥२१॥
हे मधुसूदन ! अधम, दुरात्मा र कर्मचण्डाल बनेको मलाई सुदर्शन चक्रले मार्नुहोस् ॥२१॥
यस्य देवाः सगन्धर्वा युद्धे सासुरमानुषाः। लोमच्छेत्तुं न शक्ताः स्युस्तस्य च्छिन्नं मया शिरः ॥२२॥
श्रुत्वा सुदर्शनवचः प्राह नारायणस्तदा। श्रूयतां मुनिशार्दूल येन च्छिन्नं शिरो मम ॥२३॥
आसीत् पुरा चण्डनामा दानवोऽतिपराक्रमः। वाराणस्यां तपस्तेपे शिवाराधनतत्परः ॥२४॥
दानवेन्द्रे सुतुष्टोऽभूदुमानाथः शिवायुतः। वरं वरय दैत्येन्द्र तव यन्मनसेप्सितम् ॥२५॥
महादेववचः श्रुत्वा दानवेन्द्रस्तपोधन। स्त्रियं विना सर्वसत्त्वावध्यं वव्रे वरं तदा ॥२६॥
शुक्राचार्यस्य शिष्योऽभूत् सुमतिर्धर्मतत्परः। शिष्यः परशुरामस्य धनुर्विद्याविशारदः ॥२७॥
सखा स दानवपतेरत्यन्तं प्रियदर्शनः। यानपानाशने तस्य निर्विशेषोऽभवद्द्विजः ॥२८॥
शिवस्य वरलाभेन सुमतेश्च प्रसादतः। त्रैलोक्यराज्यं बुभुजे चण्डनामा स दानवः ॥२९॥
पीडितास्तेन दैत्येन देवाः सेन्द्रपुरोगमाः। गत्वा च क्षीरजलधिं तुष्टुवुः कमलेक्षणम् ॥३०॥
तुष्टो भूत्वा जगन्नाथः प्रोवाच बलसूदनम्। तवागमनकृत्यं यद्वद शीघ्रं करोम्यहम् ॥३१॥
श्रुत्वा नारायणवचः प्रोवाच बलसूदनः। युद्ध्यस्व चण्डदैत्येन देवार्थं पुरुषोत्तम ॥३२॥

---

हे श्रेष्ठ मुनि ! तिमी नडराऊ खिन्न पनि नहोऊ, तिमीले राम्रै गऱ्यौ। हे तपोधन ! म तिमीदेखि खुसी छु। हे मुनिश्रेष्ठ ! डर छोड। हे सुव्रत ! वर माग। नारायणको उत्तम वाक्य सुनेर उत्तिखेर निडर भएका तपोधनले हात जोडेर भने – हे भगवान् ! ठूलो अपकार गर्नेलाई वर दिनुहुन्छ, यो पनि विडम्बना नै हो। देव, गन्धर्व, दैत्य र मानिसहरूले युद्धमा जसको रौंसम्म पनि काट्न सकेनन्, त्यस्ता नारायणको टाउको मैले काटेँ ॥१९-२२॥

सुदर्शनको यस्तो वचन सुनेर नारायणले भन्नुभयो – हे श्रेष्ठ मुनि ! जुन कारणले मेरो टाउको काटियो, त्यसको कारण सुन – पहिले अत्यन्त पराक्रमी चण्ड नाम गरेको दानव थियो। त्यसले शिवको आराधना गर्दै बनारसमा तपस्या गऱ्यो ॥२४॥ देवी पार्वतका साथमा विराजमान हुनुभएका शङ्कर दानवराज चण्डमाथि प्रसन्न हुनुभयो र 'हे दैत्यराज ! तिमीलाई मनमा लागेको वर माग' भन्नुभयो ॥२३-२५॥

हे तपोधन ! दानवराजले महादेवको वचन सुनेर स्त्रीजाति बाहेक कुनै प्राणीद्वारा पनि नमारिने हुँ भनी वर मागे। धनुर्विद्यामा विशारद परशुरामका शिष्यधर्ममा लागेका सुमति शुक्राचार्यका पनि शिष्य थिए। ती ब्राह्मण दानवपतिका अत्यन्तै प्यारा र हिँडाइ, खुवाइ र पियाइमा फरक नभएका मित्र भए। भगवान् शिवबाट वर प्राप्त गरेका कारण र शुक्राचार्यका शिष्य सुमतिको कृपाले गर्दा चण्डनामक दानवले त्रिलोकीको साम्राज्यको भोग गरे। ती दैत्यले पिरिएका इन्द्रादि देवताहरू क्षीरसमुद्रमा गएर कमलका जस्ता आँखा भएका भगवान् नारायणको स्तुति गरे ॥२६-३०॥

जगन्नाथ नारायणले खुसी भएर इन्द्रलाई भन्नुभयो – तपाईं आउनाको काम के हो छिट्टै भन्नुहोस्, म त्यसको उपाय गर्छु। नारायणको यस्ता वचन सुनेर इन्द्रले हे पुरुषोत्तम ! देवताका लागि चण्ड दैत्यसँग युद्ध गर्नुहोस् भने ॥३१-३२॥

मार्कण्डेय उवाच

स तथेति प्रतिज्ञाय दैत्यारिस्त्रिदशैः सह। ययौ चण्डपुरं योद्धुं दैत्येन्द्रेण बलीयसा ॥३३॥
आगतं सुरसैन्यं च श्रुत्वा चण्डासुरो रुषा। असङ्ख्यैर्दितिजैर्युक्तः स्वपुरान्निर्ययौ बहिः ॥३४॥
ततः समभवद्युद्धं तुमुलं लोमहर्षणम्। दानवानां सुराणां च नानाशस्त्रप्रहारिणाम् ॥३५॥
ततः प्रावर्तत नदी रुधिरेण भयावहा। रथचक्रग्राहवती मांससङ्घातकर्दमा ॥३६॥
छिन्नमुण्डचयैः पूर्णा केशशैवालसंयुता। शिरोर्मिभीषणा घोरा देवासुरविनाशिनी ॥३७॥
शूरा गच्छन्ति तत्पारं विनिमज्जन्ति कातराः। तदा देवबलं भग्नं दैत्यैर्भीमपराक्रमैः ॥३८॥
ततो भीमबलैर्दैत्यैर्मम युद्धभून्मुने। मम शार्ङ्गच्युतैर्बाणैर्भग्नं दैत्यबलं महत् ॥३९॥
भग्नां स्वां वाहिनीं दृष्ट्वा चण्डो दैत्यपतिस्तदा। मया योद्धुं समायातो घोरैर्दैत्यबलैर्वृतः ॥४०॥
महता रथघोषेण नादयन् वै वसुन्धराम्। छादयन् बाणवर्षैर्मां दर्शयन् हस्तलाघवम् ॥४१॥
ततो युद्धमभूद् घोरं मेघयोरिव वर्षतोः। त्रिभिर्बाणैर्ललाटे मे हृदये सप्तभिः शरैः ॥४२॥
गरुडं च त्रिषष्ट्या वै विव्याध दितिजाधिपः। मयाऽपि हृदयं तस्य भिन्नं पञ्चभिराशुगैः ॥४३॥
ललाटे चार्पिता बाणा दश वै मर्मभेदिनः। ततः क्रुद्धोऽतिदनुजो मां विव्याध त्रिभिः शरैः ॥४४॥
गरुडं चाष्टभिर्बाणैर्दारयामास दारुणः। गरुडस्य शरीरात् तु शुश्राव रुधिरं बहु ॥४५॥
गरुडं विकलं दृष्ट्वा क्रोधो मे समजायत। मया छिन्नो ध्वजस्तस्य शरेण नतपर्वणा ॥४६॥
सारथेश्च शिरश्छिन्नं शरेणैकेन तत्क्षणात्। चतुर्भिश्चतुरो वाहा हतास्तस्य दुरात्मनः ॥४७॥
वर्म छिन्नं शरैकेण हृदये पञ्च सायकाः। अर्पिता दितिजेशस्य मया क्रोधेन तत्क्षणात् ॥४८॥
विरथश्छिन्नवर्मा च हताश्वो हतसारथिः। पदातिरभवच्छीघ्रं व्याकुलश्चाभवद् भृशम् ॥४९॥

---

मार्कण्डेयले भन्नुभयो – ती इन्द्रलाई हुन्छ भनेर भगवान् विष्णु देवताहरूका साथ बलियो दैत्यराजसँग लड्नका लागि चण्डपुर जानुभयो। देवताको सेना आएको सुनेर रीसले असंख्य दैत्यहरूका साथ चण्ड दैत्य आफ्नो शहरबाट बाहिर निस्किए। त्यसपछि विभिन्न हतियारले परस्पर प्रहार गर्ने देवता र दैत्यहरूका बीच भयङ्कर रोमाञ्चकारी युद्ध भयो ॥३३–३५॥

त्यसपछि रगतै रगतले डरलाग्दो भएकी, रथ र पाँग्रा नै ग्राह भएकी, मासुको थुप्रो नै हिलो भएकी, काटिएका टाउकाका थुप्राले भरिएकी, कपाल नै लेउ भएकी, शर नै डरलाग्दो भेल भएकी, देवता र दैत्यलाई नाश गर्ने नदी बगिन्। शूराहरू त्यस नदीको पारि पुगे र कातरहरू त्यस नदीमा डुबे। त्यसपछि भयङ्कर पराक्रम भएका दैत्यहरूले देवताहरूको सेना तहसनहस पारिदिए ॥३६–३८॥

हे मुनि ! त्यसपछि अत्यन्त बलिया दैत्यहरूका साथ मेरो लडाइँ भयो। मेरो धनुबाट छोडिएका बाणले दैत्यहरूको ठूलो सेनाको नाश भयो ॥३९॥ त्यसपछि दैत्यराज चण्ड आफ्नो सेना नाश भएको देखेर मसँग लड्नका लागि रथको ठूलो शब्दले पृथ्वीलाई नै घन्काउँदै बाणको वर्षाले मलाई ढाक्दै र हस्तलाघव देखाउँदै आए ॥३९–४१॥

जलधारा वर्साउने दुईथरी बादलको भैँ त्यहाँ डरलाग्दो युद्ध भयो। दैत्यराजले तीनवटा बाणले मेरो निधारमा, सातवटा बाणले मेरो छातीमा र त्रिसट्ठी बाणले गरुडलाई हाने। मैले पनि तिनको छाती पाँचवटा बाणले छेडिदिएँ र मर्म नै छेड्ने दशवटा बाण तिनको निधारमा हानिदिएँ। त्यसपछि खूब रिसाएको डरलाग्दो त्यस दैत्यले मलाई तीनवटा बाणले हान्यो र गरुडलाई आठ ओटा बाणले प्रहार गऱ्यो। जसले गर्दा गरुडको शरीरबाट धेरै रगत बग्यो ॥४२–४५॥

गरुडलाई विकल देखेर मलाई रस्स उठ्यो। मैले टुप्पो नुहेको बाणले त्यसको ध्वजा काटिदिएँ, उत्तिखेरै एउटा बाणले सारथिको टाउको काटेँ र त्यस दुरात्मालाई चारवटा बाणद्वारा प्रहार गरेँ। मैले रीसले उत्तिखेरै एउटा बाणले कवच फोरिदिएँ र दैत्यराजको छातीमा पाँचवटा बाण हानिदिएँ। रथ नभएको, कवच काटिएको, घोडाहरू मरेको र सारथि पनि मरेको हुँदा तुरुन्तै भुइँमा हिँड्ने भयो र अत्यन्त व्याकुल पनि भयो ॥४६–४९॥

दानवं पीडितं दृष्ट्वा मच्छरैरर्दितं भृशम्। त्रायन् द्विजवरः शीघ्रं सुमतिः प्रत्यपद्यत ॥५०॥
स कृत्वा पृष्ठतो दैत्यं रथेन महता द्विजः। अभ्ययान्मामतिक्रुद्धश्चण्डस्नेहसमाकुलः ॥५१॥
शिष्यः परशुरामस्य धनुर्विद्याविशारदः। मन्त्रशास्त्रे च शुक्रस्य प्रियशिष्यो द्विजोत्तमः ॥५२॥
तेन मे दारुणं युद्धमतीव प्रत्यपद्यत। आसीत् युद्धं सुतुमुलं सिंहयोरिव कानने ॥५३॥
मम द्विजर्षभस्यापि देवलोकभयावहम्। आग्नेयास्त्रं मया क्षिप्तं पर्जन्यं विदधन्मुने ॥५४॥
वायव्यास्त्रं मया क्षिप्तं पर्वतास्त्रं स सृष्टवान्। सर्पास्त्रं तु मया क्षिप्तं गरुडास्त्रं स सृष्टवान् ॥५५॥
कृते प्रतिकृतं कुर्वन् सुमतिः शूरसत्तमः। विव्याध हृदयं घोरैर्मम सप्तभिराशुगैः ॥५६॥
नवत्या गरुडं विद्धा ननाद द्विजसत्तमः। भिन्नमर्मा तु गरुड आननाद्रुधिरं वमन् ॥५७॥
पपात गरुडो भूमौ निश्चेष्टः पादपो यथा। अहं पदातिरभवं पतिते गरुडे भुवि ॥५८॥
हाहाकारो महानासीद्देवानामतिदारुणः। लज्जाक्रोधौ समुत्पन्नौ क्षमाशीलस्य मे मुने ॥५९॥
देवानां पश्यतां तत्र भाविनोऽर्थस्य गौरवात्। चक्रं सुदर्शनं क्षिप्तं मया ज्वालातिभीषणम् ॥६०॥
छिन्नं शिरस्तु चक्रेण ब्राह्मणस्य तदा मया। ब्रह्महत्या तदा घोरा मामियाय द्विजोत्तम ॥६१॥
शुक्राचार्यो युद्धभूमिमागत्य क्रोधविह्वलः। शशापाच्युत शिष्यस्य शिरच्छिन्नं त्वया यतः ॥६२॥
अतोऽस्य वंशजो विप्रः शिरश्छेत्स्यति ते हरे। एवं शापो मया लब्धः शुक्राचार्यात् सुदारुणः ॥६३॥
ब्रह्महत्याभिभूतेन देशा भ्रान्ता मया मुने। लब्धं शर्म न कुत्रापि भ्रमता द्विजसत्तम ॥६४॥
दोलागिरौ चम्पकवृक्षमध्ये मया स्थितं पापवशेन विप्र।
शुक्रस्य शापेन शिरो मदीयं छिन्नं त्वया विप्र न तेऽस्ति दोषः ॥६५॥
अत्र दोलागिरौ स्थास्ये छिन्नशापो द्विजोत्तम। सुदर्शन त्वमत्रैव मम पूजापरो भव ॥६६॥
द्वादश्यां पौर्णमास्यां च तथैव बुधवासरे। ये द्रक्ष्यन्ति नरा भक्त्या ते वै वैकुण्ठगामिनः ॥६७॥
एवं दोलागिरौ रम्ये हरिश्चम्पकपादपात्। छिन्नशीर्षस्थितस्तत्र पूजकस्तु सुदर्शनः ॥६८॥
स्थितं दोलागिरौ वीक्ष्य सर्पा निर्विषतां गताः। गरुडस्य प्रसादेन जैमिने मुनिसत्तम ॥६९॥

इति श्रीनेपालमाहात्म्ये हिमवत्खण्डे गरुडनारायणप्रादुर्भावो नाम द्वितीयोऽध्यायः ॥२॥

---

मेरा बाणद्वारा साह्रै चोटमा परेको दैत्यराजलाई दुःखी देखेर त्यसको रक्षा गर्न द्विजवर सुमति त्यहाँ आइपुगे। धेरै रिसाएका चण्डको स्नेहले आकुल भएका परशुरामका शिष्य, धनुर्विद्या र मन्त्रशास्त्रमा विशारद शुक्रका प्रिय शिष्य ती श्रेष्ठ ब्राह्मण सुमति ठूलो रथमा दैत्यलाई पछाडि पारेर मतर्फ आए। सुमतिका साथ मेरो भयङ्कर युद्ध भयो। मेरो र ती श्रेष्ठ ब्राह्मणको बीचमा देवलोकलाई भय उत्पन्न गराउने गरी भएको युद्ध जङ्गलका कुनै दुई सिंहको जस्तो थियो। हे मुनि ! मैले आग्नेयास्त्र छोडें, उनले वर्षा गराए। मैले वायव्यास्त्र छोडें, उनले पर्वतास्त्रको सिर्जना गरे। यस्तै मैले सर्पास्त्र छोडें, उनले गरुडास्त्रको सिर्जना गरे ॥५०-५५॥

क्रियाको प्रतिक्रिया गर्दै वीर सुमतिले भयङ्कर सातवटा बाणले मेरो हृदयमा चोट पुऱ्याए। त्यसपछि ती सुमतिले नब्बे ओटा बाणले गरुडलाई प्रहार गरेर कुर्लिए। मर्मस्थल छेडिएका गरुड मुखबाट रगत वान्ता गर्दै सुकेको रुख झैं भुईंमा लडे। गरुड भुईंमा लडेपछि म पैदल हिंड्न लागें। देवताहरूको बीचमा ठूलो हाहाकार भयो। हे मुनि ! क्षमाशील मेरो मनमो पनि लाज र रीस उत्पन्न भयो ॥५६-५९॥

पछि हुने अर्थको गौरवबाट हेरिरहेका देवताहरूको अगाडि ज्वालाले अत्यन्त डरलाग्दो सुदर्शन चक्र मैले सुमतिमाथि प्रहार गरें। हे द्विजोत्तम ! मैले ब्राह्मणको टाउको चक्रले काटिदिएँ। त्यसपछि मलाई घोर ब्रह्महत्या लाग्यो। रीसले विह्वल भएका शुक्राचार्यले युद्धमैदानमा आएर मलाई सराप दिंदै भने - हे अच्युत ! तपाईंले मेरा शिष्यको टाउको काटिदिनुभयो, यसै कारणले हे हरि ! यिनैको कुलमा जन्मेको ब्राह्मणले तपाईंको टाउको काट्नेछ। यस्तो भयङ्कर सराप मैले शुक्राचार्यबाट पाएँ ॥६०-६३॥

हे मुनि ! ब्रह्महत्याले अभिभूत भएको म देशहरूमा घुमें, तर हे द्विजसत्तम ! घुम्दा मैले कतै पनि सुख पाउन सकिन। हे विप्र ! पापको कारणले म दोलागिरिको चाँपको रुखको बीचमा बसें। शुक्रको सरापले गर्दा तिमीले मेरो टाउको काट्यौ। हे ब्राह्मण ! यसमा तिम्रो दोष छैन। हे श्रेष्ठ ब्राह्मण ! सराप सकिएपछि म अब यसै दोलागिरिमा बस्छु। हे सुदर्शन ! तिमी यहीं नै मेरो सेवक भएर बस। द्वादशी, पूर्णिमा, र बुधवार जुन जुन मानिसले भक्तिपूर्वक मेरो दर्शन गर्नेछन्, ती वैकुण्ठ जानेछन् ॥६४-६७॥

यसरी रमणीय दोलागिरिमा चाँपको रुखबाट प्रकट हुने टाउको काटिएका हरि रहनुभएको छ र त्यहाँ हरिकै पूजारी सुदर्शन रहेका छन्। हे श्रेष्ठ मुनि जैमिनि ! दोलागिरिमा रहेका नारायणलाई हेरेर गरुडको प्रसादले सर्पहरू निर्विष हुन्छन् ॥६८-६९॥

नेपाल माहात्म्य हिमवत्खण्डमा गरुडनारायणको प्रादुर्भाव भएको दोस्रो अध्याय पूर्ण भयो।

# तृतीयोऽध्यायः

नेपाले वाल्मीकीयरामायणस्य रचना
(नेपालमा वाल्मीकीयरामायणको रचना)

मार्कण्डेय उवाच

आसीच्च तमसातीरे वाल्मीकिर्मुनिसत्तमः। वेदवेदाङ्गनिपुणस्तपःस्वाध्यायतत्परः ॥१॥
कदाचिद्वचन तस्याकस्मिकं समजायत। नारदस्योपदेशेन प्राप्याज्ञां ब्रह्मणोऽपि च ॥२॥
रामायणकथां कर्तुं निश्चयं कृतवान् मुनिः। पप्रच्छ नारदमुनिं वाल्मीकिर्मुनिपुङ्गवः ॥३॥
कस्मिंस्थले मया स्थित्वा काव्यं कार्यमनुत्तमम्। कस्मिंस्थले वाग्विभूतिर्जायते मुनिसत्तम ॥४॥
स्थैर्यं च मनसः कुत्र सर्वोपद्रववर्जिते। जायते मुनिशार्दूल तत्र गत्वा करोम्यहम् ॥५॥
रामायणं नाम काव्यं मुने परमशोभनम्। श्रुत्वा वाल्मीकिवचनं नारदः प्राह शोभनम् ॥६॥
दोलागिरेरग्निभागे वीरभद्रानदीद्वयम्। तयोश्च सङ्गमे रम्ये नानापादपशोभिते ॥७॥
नारिकेलैश्च जम्बीरैः खर्जूरैरुपशोभिते। आम्रैश्च पनसैश्चैव बीजपूरैः समन्ततः ॥८॥
कोविदारैश्च वकुलैः कुटजैरुपशोभिते। पुष्पैर्नानाविधैरम्यैर्द्वितीय इव नन्दने ॥९॥
तत्र गत्वा मुनिश्रेष्ठ सर्वोपद्रववर्जिते। कुरु रामायणं काव्यं जनानां गतिदायकम् ॥१०॥
श्रुत्वा स नारदवचो वाल्मीकिर्मुनिसत्तमः। वीरभद्रासङ्गमेऽस्मिन् स गत्वा मुनिपुङ्गवः ॥११॥
भावि रामायणं काव्यं चक्रे परमशोभनम्। ततः प्रीतो मुनिवरः स्थलेऽनुग्रहमाचरत् ॥१२॥
आहूय तमसां वाक्यं सरितं निजगाद ह। त्वमप्यत्रैव तमसे मत्प्रीत्या सरितां सरे ॥१३॥
अन्तर्गुप्ता सङ्गमेऽस्मिन् वह शीघ्रं गतिप्रदे। मुनेर्वचनमाकर्ण्य तमसाऽन्तर्हिताऽवहत् ॥१४॥
यदा च रघुनाथेन सागरे सेतुबन्धनम्। कर्तव्यं वायुतनयस्तदाऽऽगत्य हिमालयम् ॥१५॥
उत्पाट्य हिमवच्छृङ्गं दोर्भ्यामादाय मारुतिः। वीरभद्रासङ्गमेऽतिश्रान्तः संस्थाप्य तं गिरिम् ॥१६॥
संस्थाप्य तु महालिङ्गं नाम्ना हनुमदीश्वरम्। विश्राम्य सलिलं पीत्वा दोर्भ्यामादाय तं गिरिम् ॥१७॥
विहायसगतिः शीघ्रं हनूमान् वायुनन्दनः। ततः प्रभृति तज्जातं हनुमत्तीर्थमुत्तमम् ॥१८॥
येऽत्र स्नानं करिष्यन्ति सङ्गमेऽतिसुदुर्लभे। न द्रक्ष्यन्ति मनुष्यास्ते भास्करेर्मुखपङ्कजम् ॥१९॥
प्रातः स्नानं करिष्यन्ति ये नरा भक्तिसंयुताः। धनयुक्ता भविष्यन्ति कृतार्थाः स्वर्गगामिनः ॥२०॥
किञ्चिद् दूरे सङ्गमस्य यज्ञभूमिं मनोहराम्। विधाय मुनिभिः सार्द्धं वाजपेयमथाकरोत् ॥२१॥
यज्ञं समाप्य वाल्मीकिर्नवनाडीमयं गिरिम्। आरुरोह द्विजश्रेष्ठो मुनिभिर्मुनिसत्तमः ॥२२॥
कटके तस्य शैलस्य नानानिर्झरशोभिते। लिङ्गं संस्थापयामास वाल्मीकीश्वरसंज्ञितम् ॥२३॥
स्थापयित्वा महालिङ्गं वाल्मीकिर्मुनिसत्तमः। स्वाश्रमे तमसातीरे ययौ मुनिर्गणैर्वृतः ॥२४॥
वाल्मीकीश्वरमालोक्य वाग्विभूतिः प्रजायते। अतो वागीश्वरं लिङ्गं प्रवदन्ति मनीषिणः ॥२५॥
आषाढे पौर्णमास्यां वै वागीश्वरविलोकनात्। अक्षयः स्वर्गवासः स्याज्जैमिने मुनिसत्तम ॥२६॥
एवं ते कथितं विप्र किमन्यच्छ्रोतुमिच्छसि। कथयिष्यामि तत् सर्वं नावाच्यं विद्यते क्वचित् ॥२७॥

जैमिनिरुवाच

अच्युतः सुमतिं हत्वा ब्रह्महत्यां सुदारुणाम्। लब्ध्वा देशान् स बभ्राम किमकारि सुरस्ततः ॥२८॥

मार्कण्डेय उवाच

ब्रह्महत्याऽभिभूतेऽस्मिन् जाते नारायणे प्रभो। त्रैलोक्यं तापयामास चण्डः परमकोपनः ॥२९॥
सुमतेर्वधसन्तप्तः प्रत्यहं दितिजाधिपः। देवान् विद्रावयामास देवाः सर्वे पलायिताः ॥३०॥
अलब्धरक्षास्ते देवा ब्रह्माणं शरणं ययुः। तुष्टुवुर्वाग्भिरिष्टाभिर्देवाः शक्रपुरोगमाः ॥३१॥
तुष्टो ब्रह्मा प्रत्युवाच सर्वानेव दिवौकसः। किमागमनकृत्यं वः कथ्यतां पुरतो मम ॥३२॥

देवा ऊचुः

हृताधिकारांश्चण्डेन त्वां प्रभो शरणं गतान्। अव नः कृपया ब्रह्मन् त्वं हि नः परमा गतिः ॥३३॥

ब्रह्मोवाच

जानामि हृद्गतां पीडां भवतां सुरसत्तमाः। श्लेष्मान्तकवनात् पूर्वं रक्तचन्दनकाननम् ॥३४॥
तद्वृक्षस्थां महादेवीं शरणं यान्तु देवताः।

मार्कण्डेय उवाच

नत्वा ब्रह्मपदाम्भोजं रक्तचन्दनकाननम् ॥३५॥
यावद् गच्छन्ति ते देवास्तावद् वै नारदो मुनिः। सर्वान् देवान् परित्यज्य चण्डासुरपुरं ययौ ॥३६॥
आगतं नारदं श्रुत्वा चण्डो दैत्याधिपस्तदा। सन्त्यज्य चासनं चैव सपर्यापात्रसंयुतः ॥३७॥
सत्कृतं नारदमुनिं कृतासनपरिग्रहम्। विनयावनतो भूत्वा पप्रच्छ दनुजाधिपः ॥३८॥
कुत आगम्यते ब्रह्मन् किमपूर्वं विलोकितम्। पवित्रीकृतमस्माकं भवनं मुनिसत्तम ॥३९॥
जाताः कृतार्थास्तु वयं दर्शनेन तवाधुना। किमागमनकृत्यं ते वद सर्वं करोम्यहम् ॥४०॥

नारद उवाच

श्रुत्वा चण्डासुरवचो नारदः प्राह दानवम्। शूरोऽसि कृतविद्योऽसि शिवभक्तोऽसि दानव ॥४१॥
त्रैलोक्यं च वशं जातं देवताश्च वशीकृताः। नारायणोऽपि विमुखः समरे ते बभूव हि ॥४२॥
कुबुद्धयः सुराः सर्वे वधार्थं तव दानव। मन्त्रयामासुरत्युच्चैर्ब्रह्मणो निकटेऽधुना ॥४३॥
शूरं त्वां शिवभक्तं च ज्ञात्वा दानवसत्तम। दया तु हृदये जाता तदर्थमिह चागतः ॥४४॥

मार्कण्डेय उवाच

नारदस्य वचः श्रुत्वा जैमिने मुनिसत्तम। जातः परमसन्त्रासश्चण्डदैत्यस्य तत्क्षणात् ॥४५॥
आस्थाय धैर्यं परमं चण्डो वचनमब्रवीत्। धन्योऽहं कृतकृत्योऽहं सफलं जीवितं मम ॥४६॥
मां विलोक्य यतो जाता भवतः करुणा मुने। कथयाशु समस्तं मे देवानां चरितं प्रभो ॥४७॥
श्रुत्वा प्रतिक्रियां तस्य करिष्ये मुनिसत्तम। इत्याकर्ण्य वचस्तस्य नारदः प्राह दानवम् ॥४८॥
शृणु दानव वक्ष्यामि मन्त्राणां हि सुपर्वणाम्। दत्तदुःखास्त्वया देवा ब्रह्माणं शरणं ययुः ॥४९॥
तुष्टो ब्रह्मा प्रत्युवाच श्रूयतां वचनं मम। चण्डासुरवधोपायो गोपनीयः प्रयत्नतः ॥५०॥
श्लेष्मान्तकवनात् पूर्वं रक्तचन्दनकाननम्। अस्ति दिव्यं महत् स्थानं तत्र चम्पकपादपः ॥५१॥
महाँस्तद्वनमध्यस्थस्तन्मध्ये जगदम्बिका। तां यात शरणं यूयं सा वः कार्यं विधास्यति ॥५२॥
इत्युक्त्वा देवताः सर्वा ब्रह्माऽप्यन्तर्हितोऽभवत्। सर्वे देवा गतास्तत्र मया च तव सन्निधौ ॥५३॥
समागतं दैत्यपते कुरु कार्यमनन्तरम्। इत्युक्त्वा प्रययौ तत्र नारदो यत्र देवताः ॥५४॥
दैत्योऽपि दुःखितो भूत्वा चिन्तयामास मन्त्रिभिः। देवताः सकलाः शीघ्रं गत्वा श्लेष्मान्तकं वनम् ॥५५॥
वाग्वत्यां सरिति स्नात्वा दृष्ट्वा पशुपतिं प्रभुम्। गुह्येश्वरीं समालोक्य गोकर्णेशं विलोक्य च ॥५६॥
दृष्ट्वा वज्रां ततो देवा दोलागिरिमथारुहन्। नारायणमथादृष्ट्वा तथा वागीश्वरं विभुम् ॥५७॥
गरुडोड्डीनमार्गेण देवतास्तद्वनं ययुः। भक्तियुक्ताः सुराः सर्वे तुष्टुवुर्जगदम्बिकाम् ॥५८॥
नारायणि जगन्मातः शिवे सर्वार्थसाधिके। शरणं ते प्रपन्नाः स्मः पाहि नः शरणागतान् ॥५९॥
हिमालयगिरेः कन्ये शिववक्षःस्थलस्थिते। भवसागरमग्नाँस्त्वं पाहि दानवसूदिनि ॥६०॥
माहेश्वरि जगद्धात्रि सृष्टिस्थित्यन्तकारिणि। भक्तानुकम्पिनि शिवे पाहि नः शरणागतान् ॥६१॥
ब्रह्मा विष्णुश्च रुद्रश्च न तेऽन्तं वेत्ति चण्डिके। के वराका वयं सर्वे त्वां स्तोतुं जगदम्बिके ॥६२॥
चण्डासुरप्रतप्तानां सर्वेषां त्वं महेश्वरि। शरणं भव कल्याणि चण्डं नाशय दानवम् ॥६३॥
एवं स्तुता सुरैर्देवी तदा चम्पकवृक्षतः। बहिर्बभूव सहसा देवानां दृष्टिगोचरा ॥६४॥
दृष्ट्वा सर्वे प्रणेमुस्ते भक्त्या माहेश्वरीं सुराः। धूपैश्च धूपयामासुः पुष्पैर्नानाविधैस्तदा ॥६५॥
पूजयामासुरत्युच्चै नैवेद्यैर्बहुविस्तरैः। तुष्टा भगवती प्राह किमागमनकारणम् ॥६६॥
ब्रूत वत्साः कुतो जाता विपत्तिर्वा भवादृशाम्। प्रश्नं यावद् गिरिसुता करोति त्रिदशान् प्रति ॥६७॥
तावत् कोलाहलो देवैः श्रुतोऽतीव भयानकः। निरूपयन्ति ते देवा यावत् कोलाहलं महत् ॥६८॥

दानवाधिपतेर्घोरं सर्वदेवभयावहम् । दृष्ट्वा तत् सैन्यमतुलं देवाः शक्रपुरोगमाः ॥६९॥
पक्षिरूपं समास्थाय दुद्रुवुस्ते दिशो दश । इन्द्रो रूपं समास्थाय मायूरमतिसुन्दरम् ॥७०॥
एकः पलायनं चक्रे सर्वदेवान् विहाय च । वायसं रूपमास्थाय यमः परमभीयुतः ॥७१॥
मुने दुद्राव वेगेन चण्डसैन्यविलोकनात् । चन्द्रश्चकोररूपेण पलायनपरोऽभवत् ॥७२॥
जीवञ्जीवकरूपेण रविणा च पलायितम् । हंसरूपं समास्थाय वरुणोऽपि पलायितः ॥७३॥
क्रौञ्चरूपं समास्थाय वायुर्भेजे दिशो दश । ईशेन वकरूपेण तपोधन पलायितम् ॥७४॥
नानापक्षिस्वरूपेण सर्वदेवैः पलायितम् । मुने भगवती शीघ्रं चम्पकाभ्यन्तरं ययौ ॥७५॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये तृतीयोऽध्यायः ॥३॥

---

मार्कण्डेयले भन्नुभयो – वेद वेदाङ्गमा निपुण तपस्या र स्वाध्यायमा तत्पर भएका श्रेष्ठ मुनि वाल्मीकि तपसा नदीको तीरमा थिए। कुनै बेला तिनको वचन अकस्मात् उत्पन्न भयो। ब्रह्माजीको आज्ञा पाएर र नारदको उपदेशद्वारा मुनिले रामायणको कथा गर्ने निश्चय गरे र मुनिमा श्रेष्ठ वाल्मीकिले नारद मुनिलाई सोधे – हे मुनिसत्तम ! कुन ठाउँमा रहेर मैले यो श्रेष्ठ काव्य लेख्नुपर्छ र कुन ठाउँमा वाग्विभूति हुन्छ। हे मुनिहरूमा श्रेष्ठ मुनि ! मन कुन उपद्रव नभएको ठाउँमा स्थिर हुन्छ। म त्यहीँ गएर नारायण नामको ज्यादै राम्रो काव्य लेख्छु ॥१–३½॥

वाल्मीकिको राम्रो कुरा सुनेर नारदले भने – दोलागिरिको आग्नेयपट्टि वीरभद्रा नामका दुई नदी छन्। तिनको राम्रो दोभानमा राम्रा विभिन्न रुखले शोभायमान भएको ॥७॥ नरिवल ज्यामीर, खजूरहरूले शोभित भएको, आँप कटहर, बिमिरा, कोइरालो, मौलसरी र ठूला कुराहरूले चारैतिर राम्रो देखिएको र अनेक किसिमका फूलहरूले राम्रो भएको, मानौँ दोस्रो इन्द्रको बगैँचा जस्तो ठाउँ छ। हे मुनिश्रेष्ठ ! सबै उपद्रोले रहित भएको त्यसै ठाउँमा गएर मानिसहरूलाई गति दिने रामायण काव्य गर्नुहोस् ॥४–१०॥

नारदको बोली सुनेर वीरभद्रा नदीको त्यस दोभानमा गई ती श्रेष्ठ मुनि वाल्मीकिले सुन्दर रामायण काव्यको रचना गरे। त्यसपछि खुसी भएका मुनिले त्यस ठाउँमा अनुग्रह गर्नुभयो र तमसालाई बोलाएर यो कुरा भन्नुभयो – गति दिने भएकी नदीहरूमा श्रेष्ठ भएकी हे तमसा ! तिमी पनि मेरो प्रेमले यसै दोभानमा लुकेर चाँडो बग्ने काम गर। मुनिको बोली सुनेर तमसा लुकेर बहिन् ॥११–१४॥

जब रामचन्द्रले समुद्रमा पुल बाँध्नुपरेको थियो, त्यसबेला वायुका छोरा हनुमान् हिमालयमा आई हिमालयको चुचुरो फोरेर हातमा राखी खूब थाकेर त्यो पर्वत वीरभद्राको दोभानमा राखी। हनुमदीश्वर नामको ठूलो लिङ्ग स्थापना गरी थकाइ मारी पानी पिई फेरि त्यो पर्वत दुई हातले बोकेर वायुका छोरा हनुमान् चाँडै नै आकाशमार्गले त्यहाँदेखि प्रस्थान गरे। त्यसैले त्यो ठाउँ उत्तम हनुमत्तीर्थ भयो ॥१५–१८॥

जसले दुर्लभ यस दोभानमा स्नान गर्नेछन्, ती मानिसहरूले यमराजको मुख देख्ने छैनन्। जो मानिसहरू भक्तिपूर्वक प्रातःस्नान गर्नेछन्, ती धनले युक्त भएका, कृतार्थ र स्वर्ग जाने हुनेछन्। वाल्मीकिले दोभानको केही यढा मनोहर यज्ञभूमि बनाएर मुनिहरूका साथ वाजपेय यज्ञ गरे। द्विजश्रेष्ठ मुनि वाल्मीकिले यज्ञ सकेर मुनिहरूका साथ नवनाडीमय पर्वतमा आरोहण गरे। उनले विभिन्न छहराले शोभायमान भएको त्यस पर्वतको माझमा वाल्मीकीश्वर नामको लिङ्गको स्थापना गरे ॥१९–२३॥

महालिङ्ग स्थापना गरेर तमसाको तीरको आफ्नो आश्रममा मुनिहरूका साथ वाल्मीकि मुनि गए। वाल्मीकीश्वरलाई हेरेर वाग्विभूति हुन्छ, त्यसै कारणले विद्वान्हरू वागीश्वर लिङ्ग भन्छन्। असारको पूर्णिमामा वागीश्वरको दर्शन गर्नाले हे मुनिसत्तम जैमिनि ! अक्षय स्वर्गवास हुन्छ ॥२४–२६॥

मार्कण्डेयले भन्नुभयो – हे विप्र ! यति कुरा मैले तपाईंलाई बताएँ, अरू के सुन्न इच्छा गर्नुहुन्छ, त्यो सबै भन्नेछु, भन्न नहुने केही पनि छैन ॥२७॥

जैमिनिले भन्नुभयो – अच्युत्ले सुमतिलाई मारेपछि भयङ्कर ब्रह्महत्या लागेर उहाँ देशहरू घुमेपछि देवताहरूले के गरे ? ॥२८॥

मार्कण्डेयले भन्नुभयो – नारायण प्रभु ब्रह्महत्याले सताइएपछि खूब रिसाहा चण्डले तिनै लोकलाई दुःख दियो। सुमतिको वधले निराश दैत्यराजले दिनहुँ देवताहरूलाई भगायो र सबै देवताहरू भागे। रक्षा नपाएका ती देवताहरू ब्रह्माजीको शरणमा गए। इन्द्रादि देवताहरूले पनि मीठा वाक्यद्वारा स्तुति गरे। खुसी भएका ब्रह्माजीले सबै देवताहरूलाई भन्नुभयो – तपाईंहरू आउनाको कारण के हो ? मेरो अगाडि भन्नुहोस् ॥२९–३२॥

देवताहरूले भने – हे प्रभु ! चण्डले अधिकार खोसिएका र तपाईंको शरणमा गएका हामीहरूको कृपापूर्वक रक्षा गर्नुहोस्। तपाईं नै हाम्रा परम गति हुनुहुन्छ ॥३३॥

ब्रह्माजीले भन्नुभयो – देवता हो ! तपाईंहरूको हृदयमा भएको दुःख म जान्दछु। श्लेष्मान्तक वनको पूर्वपट्टि रक्तचन्दनको वन छ, त्यसको एउटा रुखमा बसेकी महादेवीको शरणमा जानुहोस् ॥३४॥

मार्कण्डेयले भन्नुभयो – ब्रह्माजीको पाउरूपी कमलमा नमस्कार गरेर जब ती देवताहरू रक्तचन्दन वनमा गए, त्यसै बेला नारद मुनि सबै देवतालाई छोडेर चण्ड दैत्यको शहरमा गए। नारद आएको सुनी पूजासामग्रीका पात्र लिएका दैत्यराज चण्डले आसन नै छोडेर नारदजीको सत्कार गरे। त्यसपछि नारदमुनिलाई विनयपूर्वक सोधे – हे ब्राह्मण ! तपाईं कताबाट आउनुभयो ? के अनौठो देखियो ? हे श्रेष्ठ मुनि ! हाम्रो घरलाई पवित्र गरिदिनुभयो। तपाईंलाई देखेर हामीहरू कृतार्थ भयौं। तपाईं आउनाको कारण के हो सबै भन्नुहोस्, म सबै काम गर्छु ॥३५–४०॥

चण्डासुरको वचन सुनेर दानवलाई सम्बोधन गर्दै नारदले भने – हे दानव ! शूरो छौ, विद्या जानेका छौ र शिवका भक्त पनि छौ। तीनै लोक तिम्रा वशमा भइसके र देवताहरू पनि वशमा आइसके अनि तिमीसँगको लडाईंबाट नारायण पनि विमुख हुनुभयो। हे दानव ! तिम्रो वधका लागि बुद्धिहीन देवताहरूले अघि भर्खरै ब्रह्मासँग ठूलो मन्त्रणा गरे ॥४३॥ हे श्रेष्ठ दानव ! तिमी शूरो र शिवभक्त भन्ने जानेर हृदयमा दया जाग्यो, त्यसैले म यहाँ आएँ ॥४१–४४॥

मार्कण्डेयले भन्नुभयो – हे श्रेष्ठ मुनि जैमिनि ! नारदको बोली सुनेर उत्तिखेरै चण्ड दैत्यलाई ठूलो डर उत्पन्न भयो। खूब धैर्य लिएर चण्डले भने – म धन्य रहेछु, कृतकृत्य छु, मेरो जीवन सफल रहेछ, किनकि मलाई देखेर तपाईंमा करुणा उत्पन्न भयो। हे प्रभु ! देवताहरूको सबै चरित्र भन्नुहोस्। हे श्रेष्ठ मुनि ! सुनिसकेर त्यसको प्रतिक्रिया गर्नेछु। यस्तो तिनको कुरा सुनेर नारदले दानवलाई भने। सुन, हे दानव ! देवताहरूको मन्त्रणा भन्छु, तिमीले दुःख दिइएका देवताहरू ब्रह्माको शरणमा गए ॥४५–४९॥

ब्रह्माजीले भन्नुभयो – मेरो वचन सुन्नुहोस्, चण्डासुर मार्ने उपाय अत्यन्त गोप्य राख्नुपर्छ। श्लेष्मान्तक वनको पूर्वपट्टि रक्तचन्दनको वन भएको सुन्दर ठूलो ठाउँ छ, त्यस वनको बीचमा चाँपको ठूलो रुख छ, त्यसैको बीचमा जगत्की जननी हुनुहुन्छ, तपाईंहरू उहाँको शरणमा जानुहोस्, उहाँले नै तपाईंहरूको काम गरिदिनुहुनेछ। देवताहरूलाई यति भनेर ब्रह्माजी पनि अन्तर्धान हुनुभयो। सबै देवता त्यहीँ गए भने म तिम्रो समीपमा आएँ। हे दैत्यराज ! यसपछि उचित काम गर भनेर जहाँ देवताहरू थिए, नारद त्यहीँ गए ॥५०–५४॥

दैत्य पनि दुःखी भएर मन्त्रीहरूसँग विचार गर्न लागे। सबै देवताहरू चाँडै नै श्लेष्मान्तक वनमा गएर वाग्वती नदीमा स्नान गरेर पशुपति प्रभु, गुह्येश्वरी, गोकर्णेश र वज्रयोगिनीको दर्शन गरेर दोलागिरि पर्वतमा चढ्दा नारायण र वागीश्वर प्रभुको दर्शन पनि गरेर गरुडको ढाँचाले देवताहरू त्यस वनमा गए र भक्तिपूर्वक सबै देवताहरूले जगदम्बिकाको स्तुति गरे – हे नारायणी ! हे जगन्माता ! हे शिवा ! हे सर्वार्थसाधिका ! तपाईंको शरणमा आएका छौं, शरणमा आएका हामीहरूको रक्षा गर्नुहोस्। हे हिमालयपर्वतकी छोरी ! हे शिवको हृदयमा रहेकी ! हे दानवको नाश गर्ने ! संसारसमुद्रमा डुबेका हामीहरूको तपाईंले रक्षा गर्नुहोस् ॥५५–६०॥

हे माहेश्वरी ! हे जगद्धात्री ! हे सृष्टि, स्थिति र नाशको कारण ! हे भक्तमा दया गर्ने शिवा ! शरणमा आएका हाम्रो रक्षा गर्नुहोस्। हे चण्डिका ! ब्रह्मा विष्णु र रुद्रले पनि तपाईंको अन्त जान्दैनन्, हामी बिचराहरू हजुरको कसरी स्तुति गरौं ? हे जगदम्बिका ! हे महेश्वरी ! चण्ड दैत्यले सताइएका हामी सबैको तपाईं नै शरण हुनुहोस, हे कल्याणी ! चण्ड दैत्यको नाश गर्नुहोस् ॥६१–६३॥

यसरी देवताहरूद्वारा स्तुति गरिएकी देवी उत्तिखेरै चाँपको रुखबाट बाहिर आई देवताहरूले देखिने हुनुभयो। माहेश्वरीलाई देखेर भक्तिपूर्वक सबै देवताहरूले उहाँलाई प्रणाम गरे, धूप हाले। त्यस्तै विभिन्न किसिमका फूलहरूले र उच्च कोटिका प्रशस्त नैवेद्यहरूले पूजा गरे। खुसी भएकी भगवतीले आउनाको कारण के हो ? भनेर सोध्नुभयो – हे बाबु हो ! भन, तिमीहरूलाई विपत्ति कहाँबाट भयो ? जब पार्वतीले देवताहरूलाई यो प्रश्न गर्नुभयो ॥६४–६७॥

त्यसै बेला देवताहरूले अत्यन्तै डर लाग्दो कोलाहल सुने। जबसम्म ती देवताहरूले ठूलो कोलाहल ठम्याए, सबै देवताहरूलाई डरले थरथर पार्ने दानवराजको भयङ्कर ठूलो सैन्य देखेर इन्द्रादि देवताहरू चराको रूप लिई दशैदिशातिर हुत्तिए। इन्द्र खूब राम्रो मयूरको रूप लिएर सबै देवतालाई छोडी एक्लै भागे। हे मुनि ! चण्डको सेना देख्नाले खूब डराएका यमराज कागको रूप लिएर वेगले हुर्रिए। चन्द्रमा चखेवाको रूप लिएर भागे, जीवाजीवको रूप लिएर सूर्य पनि भागे, हाँसको रूप लिएर वरुण पनि भागे ॥६८–७३॥

हे तपोधन ! कन्याङ्कुरुङ्को रूप लिएर वायु दशै दिशातिर गए, बकुल्लाको रूप लिएका ईश पनि भागे। हे मुने ! सबै देवताहरू विभिन्न रूप लिएर भागे, तुरुन्तै भगवती चाँपभित्र जानुभयो ॥७४–७५॥

स्कन्दपुराणअन्तर्गत हिमवत्खण्डमा नेपालमाहात्म्यको तेस्रो अध्याय पूर्ण भयो।

# चतुर्थोऽध्यायः

भगवत्याश्चण्डेश्वर्याः प्रादुर्भावः

(भगवती चण्डेश्वरीको प्रादुर्भाव)

जैमिनिरुवाच

मार्कण्डेय मुनिश्रेष्ठ देवलोके पलायिते। किं चकार तदा चण्डः सर्वसैन्यसमन्वितः ॥१॥

मार्कण्डेय उवाच

पलायिते सुरगणे पक्षिरूपेण जैमिने। सर्वसैन्ययुतश्चण्डः प्रययौ चम्पकं तरुम् ॥२॥
दृष्ट्वा सपर्यासम्भारं सर्वदेवविवर्जितम्। देवैश्च रचितं दृष्ट्वा चिन्तयामास स दानवः ॥३॥
अयं सपर्यासम्भारो मद्वधार्थं सुरैः कृतः। पूजिता च महादेवी साऽप्यत्रापि न दृश्यते ॥४॥
प्रायशश्चम्पकतरुं प्रविष्टा सिंहवाहिनी। विहाय पूजासम्भारं देवैरपि पलायितम् ॥५॥
योत्स्ये चण्डिकया सार्धं यावन्नो बलसंयुता। जायते तावदेवाशु कर्तव्या हि प्रतिक्रिया ॥६॥
इति कृत्वा मतिं दैत्यः खड्गेन दृढविक्रमः। चिच्छेद चम्पकतरुं बहिर्याता महेश्वरी ॥७॥
सायुधाष्टभुजा देवी कोटिसूर्यसमप्रभा। सिंहारूढा महादेवी दैत्यं दृष्ट्वा जहास ह ॥८॥
दैत्यो गिरिसुतां दृष्ट्वा प्राह दानवपुङ्गवान्। गृह्यतां दानववरा इयं परमसुन्दरी ॥९॥
सुकुमारशरीरेऽस्याः प्रहारो नैव दानवाः। कर्तव्यः सहसा भव्या तस्मादेषा प्रगृह्यताम् ॥१०॥
इत्याज्ञां चण्डदैत्यस्य लब्ध्वा दैत्या महाबलाः। अभ्यधावन् शिवां धर्तुं नारीबुद्ध्या दुराशयाः ॥११॥
आगतान् दानवान् दृष्ट्वा हुंकारेण तथाऽम्बिका। भस्मीचकार कोपेन निःश्वासान् मुमुचेऽथ सा ॥१२॥
निःश्वासेभ्यो गणा जाता महाबलपराक्रमाः। युयुधुस्ते तदा दैत्यैर्नानाशस्त्रास्त्रपाणयः ॥१३॥
ततः सुतुमुलं युद्धमभवल्लोमहर्षणम्। रजोभिः स्यन्दनोद्धूतैस्तुरगाणां खुराहतैः ॥१४॥
आच्छन्नाश्च दिशः सर्वा दृश्यते नैव किञ्चन। अभवच्चाकुलं सैन्यं पांसुभिश्च गजोद्धुतैः ॥१५॥
क्षतजेन क्षणात् जाता नदी परमदारुणा। शूराणां हर्षजननी भीरूणां भयवर्द्धिनी ॥१६॥
यमद्वारे महाघोरे दैत्यप्राणहराऽभवत्। रजःशान्तिस्तदा जाता सूर्योऽपि परिदृश्यते ॥१७॥
देवीगणैर्दैत्यबलं भग्नं परमदारुणम्। भग्नं दैत्यबलं दृष्ट्वा चण्डः परमदारुणः ॥१८॥
अभ्ययाद्रथवेगेन दारयन्निव मेदिनीम्। चण्डो ववर्ष समरे सायकैरतिदारुणैः ॥१९॥
चिच्छेद बाहून् केषांचिद् गणानामतिदारुणः। शिरश्चिच्छेद केषां चिल्लघुहस्तः प्रतापवान् ॥२०॥
ऊरूँश्चिच्छेद केषां चिच्छरैराशीविषोपमैः। स्वबलं भग्नमालोक्य देवी परमकोपना ॥२१॥
अभ्ययादतिवेगेन चण्डं हन्तुं महाबलम्। चण्डोऽपि रथवेगेन अभ्ययाद् गिरिजां तदा ॥२२॥
आगतं दैत्यमालोक्य देवी सस्मितमब्रवीत्। युध्यस्वाद्य मया सार्द्धं स्थिरो भूत्वा महासुर ॥२३॥
इदानीं नाशयिष्यामि युद्धश्रद्धां महासुर। देवीवाक्यं समाकर्ण्य दानवो वाक्यमब्रवीत् ॥२४॥

दैत्य उवाच

तिष्ठ तिष्ठ रणे देवि मा शिवे गर्वमावह। त्वया हताः सदा दैत्या देवानुग्रहकारणात् ॥२५॥
मयाऽद्य दर्शनं जातं युद्धश्रद्धां हरामि ते। शरैर्ववर्ष तां देवीमित्युक्त्वा दैत्यपुङ्गवः ॥२६॥
शरास्त्रं तस्य चिच्छेद गिरिजा किल लीलया। देवीमुक्ताञ्छराँश्चापि चिच्छेद दनुजाधिपः ॥२७॥
महास्त्रानपि चिच्छेद देवीमुक्तान् दनोः सुतः। दैत्यमुक्तानि शस्त्राणि देवी चिच्छेद लीलया ॥२८॥
ततः परमसङ्क्रुद्धो दानवाधिपतिः शरैः। अर्दयामास गिरिजां दर्शयन् हस्तलाघवम् ॥२९॥
ततः परमसङ्क्रुद्धा दानवेन्द्रस्य चण्डिका। धनुश्चिच्छेद बाणेन शरेणैकेन सारथेः ॥३०॥
शिरश्चिच्छेद वेगेन ध्वजं बाणैरपातयत्। स च्छिन्नधन्वा दनुजो मुद्गरं घोरदर्शनम् ॥३१॥
भ्रामयित्वाऽभ्ययाद्वेगाद् देवीं हन्तुं महाबलः। दृष्ट्वाऽतिमुद्गरं घोरं देवी परमकोपना ॥३२॥
चिच्छेद तिलशस्तस्य हस्तस्थं मुद्गरं शरैः। छिन्ने च मुद्गरे दैत्यः खड्गं चर्म प्रगृह्य च ॥३३॥

अभ्ययादतिसङ्क्रुद्धश्चण्डिकाऽपि शितैः शरैः। खड्गं चर्म प्रचिच्छेद सायकैरप्यपीडयत् ॥३४॥
मत्वाऽऽमानं हीनबलं तां तु मत्वा बलाधिकाम्। महादेववरं स्मृत्वा स्त्रीवध्यत्वं स दानवः ॥३५॥
ज्ञात्वा प्रोवाच गिरिजां भक्तिमास्थाय चातुलाम्। न प्राकृताऽसि गिरिजे त्वां जानामि महेश्वरीम् ॥३६॥
आद्या शक्तिस्त्वमेवासि त्वया सृष्टं जगत्रयम्। त्वया च निहता दैत्या देवानुग्रहकारणात् ॥३७॥
हन्तव्योऽहं त्वया देवि जानाम्येतन्न संशयः। यावत् स्नात्वा महादेवी लिङ्गं संस्थापयाम्यहम् ॥३८॥
तावत् त्वमत्र समरे मद्वाक्यात् तिष्ठ चण्डिके। मां हत्वा तिष्ठ देवि त्वं रक्तचन्दनकानने ॥३९॥
नाम्ना चण्डेश्वरी भूत्वा भवानुग्रहकारिणी।

मार्कण्डेय उवाच

दानवेन्द्रवचः श्रुत्वा प्राह पर्वतनन्दिनी ॥४०॥
दानवेन्द्र त्वया लब्धं ज्ञानं परमदुर्लभम्। न स्थास्यन्त्यसुरश्रेष्ठ प्राणिनः केऽपि सर्वदा ॥४१॥
दृश्यं श्रव्यं च यत् किञ्चिन्नश्वरं विद्धि दानव। शिवलिङ्गस्थापनेऽपि न ते चिन्ताऽस्तु दानव ॥४२॥
मया हतेऽसुरश्रेष्ठ शरीराल्लिङ्गमुत्तमम्। भविष्यत्यत्र सुखदं दिव्यं चण्डेश्वराभिधम् ॥४३॥
चण्डेश्वरीति ते नाम्ना स्थास्याम्यत्रासुरोत्तम। त्वां हत्वा समरे तीक्ष्णं भक्तानुग्रहकाम्यया ॥४४॥
श्रुत्वा गिरिसुतावाक्यं ततो दानवपुङ्गवः। हर्षं च परमं लेभे रणे विक्रममादधौ ॥४५॥
उत्पाट्य पादपं दैत्यो भ्रामयित्वा महाबलः। चिक्षेप गिरिजां हन्तुं ननाद सुमहत् स्वनम् ॥४६॥
आपतन्तं तरुं दृष्ट्वा ततस्तु गिरिनन्दिनी। चिच्छेद तिलशो बाणैः पश्यतस्तस्य तत्क्षणात् ॥४७॥
चूर्णीकृतं तरुं दृष्ट्वा ततो दानवपुङ्गवः। उत्पाट्य महतीं गुर्वीं शिलां परमयत्नतः ॥४८॥
चिक्षेप भ्रामयित्वोच्चैर्जगर्ज च महाबलः। आपतन्तीं शिलां दृष्ट्वा ततो भगवती रुषा ॥४९॥
चिच्छेद सायकैर्वेगात् खण्डं खण्डं तपोधन। शिलां च विफलां दृष्ट्वा दैत्यः परमकोपनः ॥५०॥
आययौ मुष्टिमुद्यम्य देवीं हन्तुं कृतश्रमः। समायान्तं ततो दृष्ट्वा दानवं सुरदुर्जयम् ॥५१॥
शूलेन हृदयं भित्त्वा पातयामास भूतले। चालयन् सकलां पृथ्वीं ससरिद्वनपर्वताम् ॥५२॥
पपात धरणीपृष्ठे वज्राहत इवाचलः। ववौ वायुः सुखस्पर्शः पुण्यगन्धवहस्तदा ॥५३॥
आसन् मार्गवहा नद्यः सुप्रभश्च दिवाकरः। अग्नयो जज्वलुस्तत्र हते तस्मिन् दुरात्मनि ॥५४॥
अस्य दैत्यस्य देहात् तु तेजोरूपमनुत्तमम्। जातं लिङ्गं महापुण्यं नाम्ना चण्डेश्वराभिधम् ॥५५॥
ये द्रक्ष्यन्ति नरा लिङ्गं रक्तचन्दनकानने। तेषां हस्तगता सिद्धिर्भविष्यति न संशयः ॥५६॥
एवं चण्डासुरवधं कृत्वा सा शैलनन्दिनी। भक्तलोकहितार्थाय स्थिता तत्रैव कानने ॥५७॥
अद्यापि वर्तते तत्र रक्तचन्दनपादपः। कृते प्रहारे निनदः श्रूयते नरशब्दवत् ॥५८॥
वैशाखपौर्णमास्यां तु देव्या चण्डासुरो हतः। अतो महोत्सवस्तस्या रक्तचन्दनकानने ॥५९॥
तस्यां यात्रा नरैः कार्या देवीसन्तोषहेतवे। वैशाखपौर्णमास्यां तु चण्डेशीप्रीतये तदा ॥६०॥
दानं कुर्वन्ति ये भक्त्या तेषां स्वर्गो न संशयः। चण्डेश्वर्या महायात्रां ये द्रक्ष्यन्ति नरा भुवि ॥६१॥
श्रुत्वाऽध्यायमिमं पुण्यं महापापौघनाशनम्। वेदान्तवेत्ता विप्रः स्यात् क्षत्रियो विजयी भवेत् ॥
धनधान्ययुतो वैश्यः शूद्रः सद्गतिमाप्नुयात् ॥६२॥

इति श्रीस्कन्दपुराणे हिमवतखण्डे देवीप्रादुर्भावो नाम चतुर्थोऽध्यायः ॥४॥

---

जैमिनिले भन्नुभयो – हे मुनिहरूमा श्रेष्ठ मार्कण्डेय ! देवताहरू भागेपछि सबै सेनाले युक्त भएको चण्डले के गऱ्यो ? ॥१॥

मार्कण्डेयले भन्नुभयो – हे जैमिनि ! पक्षीको रूपले देवताहरू भागेपछि सबै सेनासहित चण्ड चाँपको रूख भएको ठाउँमा गयो। देवताहरूले बनाएको तर सबै देवताहरूले छाडेको पूजा सामग्री देखेर दानवले विचार गऱ्यो। यो पूजासामग्री मेरो वधका लागि देवताहरूद्वारा बनाइएको हो, पूजा गरिएकी ती महादेवी पनि देखिन्निन्। सम्भवतः सिंहमा चढ्ने चाँपको रुखमा प्रवेश गरिन् र पूजासामग्री छोडेर देवताहरू पनि भागे। चण्डिका जबसम्म बलले युक्त भएकी हुन्नन्, त्यहाँसम्म चण्डिकाका साथ लड्छु, प्रतिक्रिया चाँडै नै गर्नुपर्छ ॥२-६॥

यस्तो विचार गरेर दृढ पराक्रम भएको दैत्यले खड्गद्वारा चाँपको रुख काट्यो र माहेश्वरी बाहिर आउनुभयो। आठवटै हातमा हतियार भएकी, करोड सूर्यको बराबर तेज भएकी र सिंहमा चढेकी महादेवी दैत्यलाई देखेर हाँस्नुभयो। दैत्यले गिरिसुतालाई देखेर श्रेष्ठ दानवहरूलाई हे श्रेष्ठ दानव हो ! यी परमसुन्दरीलाई समात भन्यो। हे दानव हो ! यिनको कमलो शरीरमा झटपट हान्न हुँदैन, राम्री छन्, यसैले यिनलाई समात। चण्ड दैत्यको यस्तो आज्ञा पाएर आइमाइको बुद्धिले र दुष्ट आशाले बलिया दैत्यहरू शिवालाई समात्नका लागि दौडिए॥७-११॥

देवीले आएका दैत्यहरूलाई देखेर हुँ गरेर खरानी बनाइदिनुभयो र रीसले निःश्वास छोड्नुभयो। निःश्वासबाट ठूलो बल र पराक्रम भएका गणहरू जन्मे अनि ती शस्त्र अस्त्रहातमा लिएका गण दैत्यहरूसँग लड्न लागे। त्यसपछि रोमाञ्चकारी भयङ्कर युद्ध भयो। घोडाका खुरले हानिएको र रथले उडाइएका धूलाले सबै दिशा ढाकिए, केही पनि देखिएन। हात्तीले उडाइएको धूलाले सेना आकुल भयो॥१२-१५॥

उत्तिखेरै शूराहरूको हर्ष पैदा गर्ने र कातरहरूको डर बढाउने रगतको भयङ्कर नदी उत्पन्न भयो। यमको डरलाग्दो ढोकामा दैत्यको प्राणहरण गर्ने भइन् त्यस बेला धूलो शान्त भयो र सूर्य पनि देखिए॥१७॥ भयङ्कर दैत्यको सेनालाई देवीको गणले नष्ट गरिदियो। डरलाग्दो चण्ड दैत्यको सेना नाश भएको देखेर॥१८॥ पृथ्वीलाई नै दार्छ कि भने झैं गरेर रथको वेगले दौडियो र त्यो चण्ड युद्धमा बर्सियो। डरलाग्दा बाणहरूद्वारा॥१९॥ डरलाग्दो चण्डले कसैको हात काट्यो र छिटो हात भएको प्रतापी चण्डले कसैको टाउको काट्यो र कसैको टाउको सर्प जस्ता बाणहरूले काट्यो। आफ्नो बल नाश भएको देखेर रिसाएकी देवी अत्यन्त बलियो चण्डलाई मार्नका लागि खूब वेगले दौडिनुभयो। चण्ड पनि रथको वेगले गिरिजातिर दौड्यो॥१६-२२½॥

आएको दैत्यलाई देखेर देवीले मुस्कुराउँदै भन्नुभयो – हे महासुर ! अडेर आज मसँग लड, हे महासुर ! अहिल्यै लड्ने इच्छा खतम गरिदिनेछु, देवीको बोली सुनेर दानव मनमनै भन्न लाग्यो॥२३-२४॥

दैत्यले भन्यो- हे शिवा ! देवी ! युद्धमा डट धेरै गर्व नगर, देवताको दयाले गर्दा सधैं तिमीद्वारा दैत्यहरू नासिए। आज मैले तिमीलाई देखें तिम्रो युद्धश्रद्धा हटाउँछु। देवीलाई यति भनेर दैत्यराजले बाणहरू बर्सायो। गिरिजाले त्यसका बाणहरूलाई सजिलैसँग काटिदिनुभयो। देवीले छोडेका बाणहरू पनि दैत्यराजले काट्यो। दनुको छोराले देवीले छोडेका ठूलठूला अस्त्रहरूलाई पनि खतम पारिदियो र दैत्यले छोडेका शस्त्रहरू पनि सजिलैसँग देवीले खतम पार्नुभयो॥२५-२८॥

त्यसपछि अत्यन्त क्रुद्ध दानवराजले हस्तलाघव देखाउँदै शरहरूद्वारा गिरिजालाई चोट पुर्‍यायो। त्यसपछि खूब रिसाउनुभएकी चण्डिकाले बाणद्वारा धनु काटिदिनुभयो। एउटा बाणले सारथिको टाउको काटेर वेगपूर्वक बाणहरूले ध्वजा खसाइदिनुभयो। त्यो धनु काटिएको खूब बलियो दैत्य देख्दै डर लाग्दो मुग्रो घुमाएर देवीलाई हान्नका लागि वेगले गयो। डरलाग्दो मुग्रो देखी खूब रिसाएकी देवीले उसको हातमा रहेको मुग्रो बाणहरूले तिल जस्ता टुक्रा पारेर काटिदिनुभयो। मुग्रो खतम भएपछि खूब रिसाएको दैत्य खड्ग र ढाल लिएर अगाडि बढ्यो, चण्डिकाले पनि तीखा शरद्वारा खड्ग र ढाल काटिदिनुभयो र बाणहरूले पनि पीडा गर्नुभयो। आफूलाई थोरै बल भएको र उनीलाई धेरै बल भएकी ठानेर स्त्रीले मारिनुपर्छ भन्ने महादेवको वर सम्झेर र जानेर त्यस दानवले खूब भक्ति राखेर गिरिजालाई सम्बोधन गर्‍यो॥२९-३५½॥

दानवले भन्यो – हे गिरिजा ! तिमी साधारण होइनौ, तिमी महेश्वरीलाई म चिन्दछु, आद्या शक्ति तिमी नै होऊ, तिमीले नै तीनै जगत् सिर्जना गर्‍यौ, तिमीले नै देवताहरूको दयाले गर्दा दैत्यहरूलाई मार्‍यौ। हे देवी ! म तिमीद्वारा नै मारिनुपर्छ, यो कुरो म जान्दछु, यसमा कुनै सन्देह छैन। हे महादेवी ! जबसम्म म स्नान गरेर लिङ्गस्थापना गर्छु, तिमी त्यस बेलासम्म मेरो कुरा स्वीकार गरी युद्ध नगर। हे देवी ! मलाई मारेर तिमी यस रक्तचन्दन वनमा संसारलाई अनुग्रह गर्ने भएर चण्डेश्वरी नामले बस॥३६-३९½॥

मार्कण्डेयले भन्नुभयो – दानवराजको बोली सुनेर पर्वतपुत्री पार्वतीले भन्न लाग्नुभयो। हे दानवेन्द्र ! तिमीले पाइनसक्नु परम ज्ञान पाएछौ। हे दैत्यश्रेष्ठ ! कोही प्राणी पनि सधैं रहनेछैनन्। हे दानव ! देखिने र सुनिने जुनसुकै पनि नाशवान् हुन् भन्ने जान। हे दानव ! शिवलिङ्गस्थापनामा पनि तिमी चिन्ता नगर। हे असुरश्रेष्ठ ! मैले मारेपछि तिम्रो शरीरबाट सुख दिने दिव्य चण्डेश्वर नाम गरेको उत्तम लिङ्ग प्रकट हुनेछ। हे असुरोत्तम ! लडाईंमा तीक्ष्ण भएका तिमीलाई मारेर भक्तको अनुग्रह गर्ने इच्छाले तिम्रै नामले म चण्डेश्वरी बनेर रहनेछु॥३५-४४॥

पर्वतपुत्रीको यस्तो वचन सुनेर त्यस श्रेष्ठ दानवले युद्धमा ठूलो पराक्रम देखायो। अत्यन्त बलियो दैत्यले रुख उखेली घुमाएर पर्वतकी छोरी शिवालाई प्रहार गरी ठूलो शब्द गर्‍यो। आइपरेको रुखलाई देखेर पर्वतकी छोरी शिवाले हेरिरहेका त्यस दैत्यको रुखलाई उत्तिखेरै बाणद्वारा तिलजत्रो पारेर काटिदिनुभयो। रुखलाई धूलो धूलो पारिएको देखेर दानवले खूब मेहनतसाथ ठूलो ढुङ्गो उठाई घुमाएर प्रहार गरी अत्यन्त गर्जियो। हे तपोधन जैमिनि ! दैत्यले प्रहार गरेको

ढुङ्गो आफूतिर आइरहेको देखेर रीसपूर्वक भगवतीले बाणद्वारा खूबसँग टुक्रा टुक्रा पारिदिनुभयो। ढुङ्गो पनि विफल भएको देखेर परिश्रम गरेको र खूब रिसाएको दैत्य मुठी कसेर देवीलाई हान्न आयो। देवताहरूले जित्न नसकिने दानव आएको देखेर देवीले शूलले त्यसको छाती छेडेर पृथ्वीमा पछार्नुभयो। नदी, वन र पर्वतले युक्त भएकी सारा पृथ्वीलाई नै हल्लाउँदै वज्रले चोइटिएको पर्वत झैं त्यो दैत्य पृथ्वीमा लड्यो ॥४५-५२½॥

त्यो दुरात्मा मरेपछि पवित्र बास्ना उडाउने आनन्ददायी किसिमले स्पर्श गर्ने हावा चल्यो, नदीहरू ठीक बाटोमा बहने भए, सूर्य पनि असल प्रकाश दिने भए र अग्निदेवता धप्प बले। त्यस दैत्यको शरीरबाट त तेजोमय रूप भएको उत्तम चण्डेश्वर नामको ज्यादै पवित्र लिङ्ग उत्पन्न भयो। जुन मानिसहरू रक्तचन्दन वनमा यस लिङ्गलाई हेर्दछन्, निश्चय नै सिद्धि तिनीहरूको हातमा आइलाग्नेछ। यसरी पर्वतकी छोरी देवीले चण्ड दैत्यको वध गरेर भक्तजनको हितका लागि त्यसै वनमा बस्नुभयो। आजभोलि पनि त्यहाँ रक्तचन्दनको रुख छ, त्यसमा हानेमा मानिसको शब्द जस्तो आवाज सुनिन्छ ॥५३-५८॥

वैशाखपूर्णिमामा देवीले चण्ड दैत्यलाई मार्नुभयो। यसैले रक्तचन्दन वनमा देवीको ठूलो उत्सव हुन्छ। वैशाखपूर्णिमामा देवीको सन्तोषका लागि र चण्डेशको प्रीतिका लागि मानिसहरूले जात्रा गर्नुपर्छ। पृथ्वीमा जुन मानिसहरूले चण्डेश्वरीको जात्रा हेर्छन् र भक्तिले दान गर्छन्, तिनीहरू निश्चय नै स्वर्गमा जान पाउँछन्। पुण्यदायक र ठूलो पापलाई पनि नाश गर्ने यो अध्याय सुनेर ब्राह्मण वेदान्तवेत्ता हुनेछ, क्षत्री विजयी र वैश्य धन र धान्यले युक्त भएको हुनेछ, र शूद्रले उत्तम गति पाउनेछ ॥५९-६२॥

स्कन्द पुराणअन्तर्गत हिमवत्खण्डमा ईश्वरीको प्रादुर्भाव वर्णन भएको चौथो अध्याय पूर्ण भयो।

## पञ्चमोऽध्यायः

डोलेश्वरशिवलिङ्गस्योत्पत्तिः (डोलेश्वर शिवलिङ्गको उत्पत्ति)

जैमिनिरुवाच

हते चण्डासुरे देव्या किमकारि सुरैस्ततः। एतत् सर्वं समाचक्ष्व मार्कण्डेय तपोधन ॥१॥

मार्कण्डेय उवाच

चण्डासुरं हतं दृष्ट्वा देव्या परमदुर्जयम्। पक्षिरूपं परित्यज्यागच्छँश्चण्डेश्वरीं तदा ॥२॥
भक्तियुक्ताः सुराः सर्वे पूजयामासुरम्बिकाम्। पूजिता च महादेवी देवैर्धूपादिविस्तरैः ॥३॥
निवासमकरोत् तत्र रक्तचन्दनकानने। देवाश्चापि ततो दृष्ट्वा क्षेत्रं परमदुर्लभम् ॥४॥
स्वस्वनामाङ्कितं लिङ्गं स्थापयामासुरेव हि। धनेशः स्थापयामासः धनेश्वरमिति ध्रुवम् ॥५॥
धनेश्वरमहालिङ्गं ये द्रक्ष्यन्ति कलौ युगे। ते धनाढ्या भविष्यन्ति तपोधन न संशयः ॥६॥
कामधेनुस्ततो लिङ्गं सर्वकामफलप्रदम्। नाम्ना संस्थापयामास खुरेश्वरमनुत्तमम् ॥७॥
खुरेश्वरस्य ये भक्ता भविष्यन्ति नरोत्तमाः। गोवृद्धिरतुला तेषां भविष्यति न संशयः ॥८॥
श्लेष्मान्तकवनात् पूर्वं गणना मुनिसत्तम। रक्तचन्दननाम्नोऽस्य वनस्य क्रियते नृभिः ॥९॥
ततः पर्वतमुल्लङ्घ्य कौशिक्याः सङ्गमे शुभे। रोषमत्याः सङ्गमे च विश्वामित्रो मुनीश्वरः ॥१०॥
स्वनाम्ना स्थापयामास भुक्तिमुक्तिफलप्रदम्। कौशिकी सरितां श्रेष्ठा महापातकनाशिनी ॥११॥
विश्वामित्रस्य भगिनी नृणां दुर्मतिनाशिनी। तस्यास्तीरे महालिङ्गं विश्वामित्रेश्वरं शुभम् ॥१२॥
शिवरात्रिचतुर्दश्यां ये द्रक्ष्यन्ति मुनीश्वर। चतुर्वर्गोदयस्तेषां शीघ्रमेव न संशयः ॥१३॥
श्लेष्मान्तकवने क्षेत्रगणनाऽस्य न जायते। ततः परमसन्तुष्टो देवैः सह पुरन्दरः ॥१४॥
नीरमत्या रोषमत्याः सङ्गमे सुमनोहरे। इन्द्रेश्वरमहालिङ्गं स्थापयामास सिद्धिदम् ॥१५॥
इन्द्रेश्वरस्य ये भक्ता भविष्यन्ति तपोधन। तेषां समृद्धिरतुला भविष्यति न संशयः ॥१६॥
ज्येष्ठमासे पौर्णमास्यां स्नानं कृत्वा तु सङ्गमे। इन्द्रेश्वरं च द्रक्ष्यन्ति तेषां स्वर्गो न संशयः ॥१७॥
इन्द्रेश्वरस्य ये भक्ता भविष्यन्ति नरोत्तमाः। तेषामिन्द्रः स्वयं तुष्टः प्रदास्यति मनोरथान् ॥१८॥
चण्डासुरवधोत्पन्नहर्षनिर्भरमानसाः। त्रिदशाः शैलमुत्तीर्य सरितोः सङ्गमे शुभे ॥१९॥
आशापूरेश्वरं लिङ्गं द्रक्ष्यन्ति मनुजा भुवि। तेषां नराणां सततमाशा पूर्णा भविष्यति ॥२१॥

इत्युक्त्वा देवताः सर्वाः स्वधामानि ययुस्तदा। इति ते सर्वमाख्यातं किमन्यच्छ्रोतुमिच्छसि ॥२२॥

जैमिनिरुवाच – जैमिनि भन्नुहुन्छ –

त्वत्तः श्रुता कथा ब्रह्मन् सर्वपापविनाशिनी। अन्यानि मुख्यस्थानानि कथयाशु मम प्रभो ॥२३॥
निर्गतं त्वन्मुखाम्भोजात् कथामृतरसं प्रभो। पिबतो नास्ति मे तृप्तिः श्रोतुं श्रद्धा हि जायते ॥२४॥

मार्कण्डेय उवाच

सन्ति तीर्थान्यनेकानि श्लेष्मान्तकवने मुने। मुख्यानि तानि स्थानानि तथाऽपि कथयामि ते ॥२५॥
अस्ति वाराणसी नाम पुरी शङ्करपालिता। यस्यां पुर्यां तनुत्यागान्मुक्तिमाप्नोति मानवः ॥२६॥
यस्यामासीद् द्विजश्रेष्ठः प्रियातिथिरिति स्मृतः। तस्य भार्या गुणवती शीलौदार्यसमन्विता ॥२७॥
पतिव्रता महाभागा सर्वलक्षणलक्षिता। चत्वारस्तनयास्तस्य मुनेर्जातास्तपोधन ॥२८॥
मेधातिथिर्गुणनिधिर्भरतो मलयस्तथा। त्रयः स्वाध्यायनिरताः पितृभक्ता गुणैर्युताः ॥२९॥
कनिष्ठो मलयो दुष्टो बभूव गुणवर्जितः। सदा द्यूतप्रियश्चौरः पिशुनः परवञ्चकः ॥३०॥
वारितो बहुधा यत्नैर्मात्रा पित्रा च बन्धुभिः। न सद्वृत्तो यदा जातः पित्रा त्यक्तस्तदा सुतः ॥३१॥
ततस्तु मलयो दुष्टो वेश्यागामी बभूव ह। चौर्येण वा वञ्चनेन साधयित्वा ततो धनम् ॥३२॥
वेश्यायै सर्वदाऽयच्छत् कर्मचाण्डालतां गतः। एकदा मलयो रात्रौ क्रीडन् वै वेश्यया सुखम् ॥३३॥
श्रान्तो जलभ्रमवशाद् वारुणीं सहसा पपौ। अन्यादृशं स्वादु लब्ध्वा वेश्यां पप्रच्छ तत्क्षणात् ॥३४॥
सुभगे सलिलभ्रान्त्या किं पीतमिदमद्भुतम्। पात्रं दृष्ट्वा ततो वेश्या प्राह तं द्विजसत्तम ॥३५॥
त्वया पीता सुरा दुष्ट मम पात्रस्थिताऽशुभा। वेश्यावचनमाकर्ण्य दुःखितो मलयोऽभवत् ॥३६॥
चिन्तयामास हृदये परं निर्वेदमास्थितः। प्राप्तं द्विजकुले जन्म काश्यां विश्वेशसन्निधौ ॥३७॥
नाधीता हि मया वेदा न च तप्तं महत् तपः। नाराधितोऽपि विश्वेशो मणिकर्ण्यां निमज्जनम् ॥३८॥
न कृतं न च दानानि दत्तान्यपि कदाचन। द्यूतेऽनुरागो मे जातः प्रीतिर्वेश्याजने तथा ॥३९॥
वारुणी च मया पीता कथं मे निष्कृतिर्भवेत्। अतो ह्यात्मविशुद्ध्यर्थं महापातकनाशिनीम् ॥४०॥
स्नातुं सचैलो यास्यामि सर्वथा मणिकर्णिकाम्। इति चिन्तापरो भूत्वा लज्जामुत्सृज्य तत्क्षणात् ॥४१॥
मलयः प्रययौ शीघ्रं स्नातुं श्रीमणिकर्णिकाम्। ब्राह्मणैः क्षत्रियैर्वैश्यैः शूद्रैश्चापि समावृताम् ॥४२॥
ततो ददर्श मलयः सुपुण्यां मणिकर्णिकाम्। ब्राह्मणा यत्र कुर्वन्ति स्नानं परमपावनाः ॥४३॥
तत्रैव प्रययौ विप्रः स्नानार्थं मलयो मुने। समीपमागतं दृष्ट्वा मलयं दोषसागरम् ॥४४॥
चुकोप ब्राह्मणः कश्चिदुवाचेदं वचः पुनः। पापिष्ठ दुष्ट मलय वेश्यागामिन् नराधम ॥४५॥
स्पर्शं मा कुरु विप्राणां दूरेऽपसर लम्पट। इति विप्रवचः श्रुत्वा मलयः प्राह तं द्विजम् ॥४६॥
गच्छापसर विप्र त्वं किं कोपं कुरुषे मयि। मलयस्य वचः श्रुत्वा ब्राह्मणः प्राह तं पुनः ॥४७॥
लब्ध्वं विप्रकुले जन्म द्यूतक्रीडारतः सदा। कृत्वा च वेश्यागमनं पीत्वा हालां नराधम ॥४८॥
मणिकर्णीं समायातस्त्यक्तलज्जोऽसि लम्पट। पवित्रान् ब्राह्मणान् दृष्ट्वा कथं मूढ न लज्जसे ॥४९॥
इति विप्रवचः श्रुत्वा मलयो लज्जयाऽन्वितः। स्नात्वा सचैलो झटिति ततो विश्वेश्वरं ययौ ॥५०॥
दृष्ट्वा विश्वेश्वरं देवं मुक्तिमण्डपमागतः। पठतो वेदवेदाङ्गान् पुराणानि च तापसान् ॥५१॥
मुक्तिमण्डपमध्यस्थान् ददर्श द्विजपुङ्गवान्। तान् दृष्ट्वा दण्डवद् भूमौ प्रणम्य निजगाद ह ॥५२॥
अहं प्रियातिथेः पुत्रः कनिष्ठो मलयः स्मृतः। न वेदाः पठिताश्चापि विश्वेशः पूजितो न च ॥५३॥
द्यूतक्रीडा कृता नित्यं प्रीतिर्वेश्याजनेषु च। अज्ञानाद्वारुणी पीता जलभ्रान्त्या तपोधनाः ॥५४॥
प्रायश्चित्तं दद्ध्वं तु येन शुद्धिर्भवेन् मम। भवन्तो निपुणाः सर्वे वेदवेदाङ्गपारगाः ॥५५॥
अतिदीने कृपां यूयं कुरुध्वं मयि सर्वथा। इति तस्य वचः श्रुत्वा न कश्चित् किञ्चिदब्रवीत् ॥५६॥
मद्यपानं ब्राह्मणस्य सदाऽत्यन्तं विगर्हितम्। तन्मध्ये ब्राह्मणः कश्चिदुवाच मलयं ततः ॥५७॥
शुष्कां यष्टिमिमां धृत्वा तीर्थानि भ्रम यत्नतः। भविष्यत्यङ्कुरोऽस्याश्च यदा ब्राह्मणबालक ॥५८॥
अङ्कुरं त्वं विलोक्यैव ततः शुद्धो भविष्यसि। परिहासेन स प्राह नास्य शुद्धिर्भविष्यति ॥५९॥

मलयस्तथ्यमेवेदं चिन्तयामास तत्क्षणात्। ततो विश्वेश्वरं नत्वा विप्रांश्चैव पुनःपुनः ॥६०॥
गृहीत्वा मलयो यष्टिं तीर्थयात्रां जगाम ह। भ्रमँस्तीर्थान्यनेकानि मलयो वत्सरत्रयम् ॥६१॥
श्लेष्मान्तकवनं प्रापद् देवानामपि दुर्लभम्। स्नानं विधाय वाग्वत्यां दृष्ट्वा पशुपतिं प्रभुम् ॥६२॥
वज्रां विलोक्य तदनु दृष्ट्वा नारायणं प्रभुम्। आशापूरेश्वरं द्रष्टुं प्रविवेश महावनम् ॥६३॥
शैलाधस्तान्निधायाशु शुष्कयष्टिं ततो भुवि। स्नानं करोति मलयस्तावज्जातोऽङ्कुरोदयः ॥६४॥
जाताङ्कुरं ततो दृष्ट्वा मलयः परमाधमः। पूतं मेने तदाऽऽत्मानं परां प्रीतिमवाप च ॥६५॥
हृदये चिन्तयामास मलयो हर्षनिर्भरः। इदं पवित्रं परमं स्थानमत्यन्तदुर्लभम् ॥६६॥
अत्रैवाराधयिष्यामि व्रतस्थोऽहं महेश्वरम्। इति निश्चित्य मलयः स्थितस्तत्रैव कानने ॥६७॥
उग्रं नियममास्थाय तपस्तेपे सुदारुणम्। ततोऽस्य तपसा तुष्टो भगवान् पार्वतीपतिः ॥६८॥
भूमिं भित्त्वा महालिङ्गमुदतिष्ठत् तपोधन। मलय त्वं पवित्रोऽसि वरं वरय सुव्रत ॥६९॥
आकर्ण्य शम्भोस्तद्वाक्यं दण्डवत् प्रणिपत्य च। उवाच प्राञ्जलिर्वाक्यं मलयोऽतिशुभाशयः ॥७०॥
अत्र डोलेश्वरो नाम्ना भूत्वा शम्भुश्च सर्वदा। भक्तानामभयार्थाय तिष्ठ त्वं परमेश्वर ॥७१॥
मलयस्य समाकर्ण्य वचनं पार्वतीपतिः। प्राह तं मलयं तुष्टः स्थास्याम्यत्रैव कानने ॥७२॥
द्रक्ष्यन्ति कार्त्तिके ये मां मानवा भक्तिपूर्वकम्। तेषां कैलासवासो हि नात्र कार्या विचारणा ॥७३॥
धारातीर्थे नरः स्नात्वा दृष्ट्वा डोलेश्वरं विभुम्। मल्लोकमाप्नुयाद्धीरः सर्वथा नात्र संशमः ॥७४॥
अष्टम्यां वा चतुर्दश्यां ये मां द्रक्ष्यन्ति भक्तितः। तेषां भोगापवर्गस्य दाताऽहं नात्र संशयः ॥७५॥
मलय त्वं समाराध्य मां सदा भक्तिपूर्वकम्। योगिनामुत्तमो भूत्वा यास्यसि परमं पदम् ॥७६॥
इत्युक्त्वा मलयं देवो लिङ्गेऽन्तर्धानमाययौ। मलयोऽपि समाराध्य डोलेश्वरमकल्मषम्।
योगिनामुत्तमो भूत्वा जगाम परमं पदम् ॥७७॥

॥ इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे डोलेश्वरप्रादुर्भावो नाम पञ्चमोऽध्यायः ॥५॥

---

जैमिनिले भन्नुभयो – हे तपोधन मार्कण्डेय ! देवीले चण्डासुरलाई मारेपछि देवताहरूले के गरे ? यो सबै भन्नुहोस् ॥१॥

मार्कण्डेयले भन्नुभयो – कसैले जित्न नसकिने चण्डासुरलाई देवीले मारेको देखेर देवताहरू पक्षीको रूप छोडेर चण्डेश्वरी भएको ठाउँमा आए। भक्तिले युक्त भएका सबै देवताहरूले अम्बिकालाई पूजा गरे। धूप दीप आदिद्वारा देवताहरूले पूजा गरिएकी महादेवी पनि त्यस रक्तचन्दनवनमा बस्नुभयो। पाइनसक्नु त्यस ठाउँलाई देखेर देवताहरूले पनि आआफ्नो नामले अङ्कित भएका लिङ्गको स्थापना गरे। धनेशले धनेश्वर नामको लिङ्ग स्थापना गरे। कलियुगमा जसले धनेश्वर महालिङ्गलाई हेर्नेछन्, हे तपोधन ! ती निश्चय नै धनाढ्य हुनेछन्। कामधेनुले सबै इच्छाको फल दिने खुरेश्वर नामले उत्तम लिङ्गको स्थापना गरिन्। जो उत्तम मानिसहरूको गाईको निश्चय नै प्रशस्त वृद्धि हुनेछ ॥२–८॥

हे मुनिसत्तम ! मानिसहरू यस रक्तचन्दनवनको गणना श्लेष्मान्तक वनदेखि पूर्वतिर गर्छन्। त्यसपछि पर्वत नाघेर कौशिकी र रोषमती (कोशी र रोसी)को शुभ सङ्गममा विश्वामित्र मुनीश्वरले आफ्नो नामबाट भुक्ति, मुक्ति फल दिने लिङ्गको स्थापना गरे। कौशिकी नदीहरूमा श्रेष्ठ, महापाप नाश गर्ने, विश्वामित्रकी बहिनी र मानिसहरूको दुर्मति नाश गर्ने नदी हुन्। तिनैको तीरमा विश्वामित्र नामको शुभ महालिङ्ग छ। हे मुनीश्वर ! शिवरात्रि र चतुर्दशीमा जसले विश्वामित्रेश्वरको दर्शन गर्नेछन्, तिनीहरूको चाडैँ नै चतुर्वर्गोदय अर्थात् धर्म, अर्थ, काम, मोक्षको उदय हुनेछ, यसमा शङ्का छैन ॥९–१३॥

त्यसपछि खूब सन्तोष पाएका इन्द्रले देवताहरूका साथ गएर नीरमती र रोषमतीको सुन्दर दोभानमा सिद्धि दिने इन्द्रेश्वर महालिङ्गको स्थापना गरे। हे तपाधन ! इन्द्रेश्वरका जो भक्त हुनेछन्, निश्चय नै तिनीहरूको प्रशस्त समृद्धि हुनेछ। ज्येष्ठपूर्णिमामा त्यस दोभानमा नुहाएर इन्द्रेश्वरको जसले दर्शन गर्नेछन्, तिनीहरू निश्चय नै स्वर्ग जान्छन्। जुन श्रेष्ठ मानिसहरू इन्द्रेश्वरका भक्त हुनेछन्, स्वयं प्रसन्न भएका इन्द्रले तिनीहरूको मनोरथ दिनेछन् ॥१४–१८॥

चण्डासुरको वधबाट हर्ष उत्पन्न भएका र निर्भीक मन भएका देवताहरूले डाँडाबाट झरेर नदीको शुभ दोभानमा उत्तम आशापुरेश्वर लिङ्गको स्थापना गरे॥ हे द्विजोत्तम ! त्यसपछि सन्तुष्ट भएका देवताहरूले भने – पृथ्वीमा जुन मानिसहरू आशापुरेश्वर लिङ्गको दर्शन गर्नेछन्, ती मानिसहरूको आशा सधैँ पूर्ण हुनेछ। यति भनेर सबै देवताहरू आ–आफ्नो धाममा गए। यी सबै कथा मैले तपाईंलाई भनें, अरू के सुन्न इच्छा गर्नुहुन्छ ? ॥१९–२२॥

जैमिनिले भन्नुभयो – हे ब्रह्मन् ! तपाईंबाट सबै पाप नाश गर्ने कथा सुनें। अरू मुख्य ठाउँहरू पनि चाँडो भन्नुहोस्। हे प्रभु ! तपाईंको मुखरूपी कमलबाट निस्केको कथारूपी अमृतरस पिउने मेरो तृप्ति नै हुँदैन, सुन्नलाई श्रद्धा नै उत्पन्न हुन्छ ॥२३–२४॥

मार्कण्डेय भन्नुहुन्छ – हे मुनि ! श्लेष्मान्तक वनमा अनेकौं तीर्थहरू छन्, तिनमा मुख्य ती ठाउँहरू तपाईंलाई भन्छु। शङ्करद्वारा रक्षा गरिएको वाराणसी नामको शहर छ, जुन शहरमा मानिसहरूले प्राणत्याग गर्नाले मुक्ति पाउँछन्। वाराणसीमा प्रियातिथि नामका श्रेष्ठ ब्राह्मण थिए। तिनकी पत्नी गुणवती शील र उदारताले युक्त भएकी सौभाग्यवती र सबै लक्षण भएकी थिइन्। हे तपोधन जैमिनि ! ती मुनिका मेधातिथि, गुणनिधि, भरत र मलय नामका चार छोरा थिए। ती मध्ये तीन जना पढाइमा लागेका पितृभक्त र गुणहरूले युक्त भए, तर कान्छो मलय दुष्ट, गुण नभएको, सधैं जुवा खेल्न मन पराउने, चोर छुल्याहा र अरूलाई ठग्ने स्वभावको थियो ॥२५–३०॥

बाबु, आमा र बन्धुहरूले मेहनतसाथ धेरै पटक रोके, तैपनि जब ऊ असल आचरणको भएन अनि बाबुले छोरालाई त्यागिदिए। त्यसपछि दुष्ट मलय वेश्यागामी भयो। चोरेर अथवा ठगेर धन कमाएर वेश्यालाई सधैं दिन्थ्यो। कर्मचण्डाल मलय एकदिन रातमा सुखपूर्वक वेश्यासँग खेलवाड गर्दै थाकेर पानी जस्तो ठानी झटपट रक्सी पियो। अर्कै थोकको जस्तो स्वाद पाएर उत्तिखेरै वेश्यालाई हे सुभगे ! पानी जस्तो ठानेर मैले के यो अनौठो चीज पिएँ ? भनेर सोध्यो ॥३१–३४॥

हे द्विजसत्तम ! त्यसपछि वेश्याले भाँडो हेरेर त्यसलाई भनी – हे बदमास ! तिमीले त मेरो भाँडामा रहेको अपवित्र रक्सी पो पियौ। वेश्याको बोली सुनेर मलय दुःखित भयो। ज्यादै दिक्दार भएको त्यसले मनमनै विचार गऱ्यो – विश्वेश्वरको नजिक काशीमा ब्राह्मणकुलमा जन्म पाएर न मैले वेद पढें, न मैले ठूलो तपस्या गरें, विश्वेश्वरको पनि आराधना गरिनँ, मणिकर्णिकामा पनि स्नान गरिन, न कहिल्यै दान गरें, जुवा खेल्न मन पराउने म भएँ, वेश्यासँग प्रेम भयो, रक्सी पनि मैले पिएँ, कसरी मेरो प्रायश्चित्त होला ? यसै कारण अब आत्मशुद्धिका निम्ति ठूलो पाप नाश गर्ने मणिकर्णिकामा जसरी भए पनि सचैल स्नान गर्न जान्छु। यस्तो विचार गरेर मलय उत्तिखेरै लाजधिन छाडेर मणिकर्णिकामा स्नान गर्न हिंड्यो ॥३५–४१॥

ब्राह्मण, क्षत्रिय, वैश्य, र शूद्रहरूले पनि ढाकिएको पवित्र मणिकर्णिकालाई मलयले देख्यो। हे मुनि ! जहाँ परमपावन ब्राह्मणहरू स्नान गर्छन्, त्यहीं नै मलय ब्राह्मण गयो। दोषै दोषको समुद्र भएको मलय नजिकै आएको देखेर ब्राह्मण रिसाए र फेरि उनले भने – पापी, दुष्ट, नराधम, वेश्यागामी, लम्पट मलय ! यहा जा, बाहुनहरूको स्पर्श नै नगर। ब्राह्मणको यस्तो बोली सुनेर मलयले ती ब्राह्मलाई हे ब्राह्मण ! तपाईं जा, हट् भनेर ममाथि किन रीस गर्नुहुन्छ ? भन्यो। मलयको बोली सुनेर ब्राह्मणले फेरि भने – ब्राह्मणको कुलमा जन्म लिएर पनि सधैं जुवा खेल्नमा मस्त भएर वेश्यागमन गरेर, रक्सी पिएर हे नराधम ! मणिकर्णिकामा आएको छस्, हे लम्पट ! लाज मानिनस्, हे मूर्ख ! पवित्र ब्राह्मणलाई देखेर कसरी लाज मान्दैनस् ॥४२–४९॥

ब्राह्मणको यस्तो वचन सुनेर लाज मानेको मलय तुरुन्तै सचैल स्नान गरेर विश्वेश्वर भएको ठाउँमा गयो । विश्वेश्वरलाई हेरेर मुक्तिमण्डपमा आइपुगेको त्यसले वेद वेदाङ्ग र पुराणहरू पढेका, मुक्तिमण्डपको बीचमा रहेका, तपस्वी श्रेष्ठ ब्राह्मणहरूलाई देख्यो। तिनीहरूलाई देखेर लौरो झैं भुइँमा परेर प्रणाम गर्दै भन्यो – म प्रियातिथिको कान्छो छोरो हुँ। मैले न वेदहरू पढें, न विश्वेश्वरलाई पूजा गरें, सधैं जूवा खेल्ने काम गरें र वेश्याहरूमा प्रेम गरें। हे तपोधनहरू ! पानी जस्तो ठानेर अज्ञानले मैले रक्सी पिएँ। जेले मेरो शुद्धि हुन्छ, त्यो प्रायश्चित्त दिनुहोस्। तपाईंहरू त सबै सिपालु हुनुहुन्छ, वेद र वेदाङ्गहरूमा पारङ्गत हुनुहुन्छ, ज्यादै दुःखी भएको ममाथि तपाईंहरूले क्यै गरेर पनि दया गर्नुहोस् ॥५०–५५½॥

यस्तो त्यसको बोली सुनेर कसैले पनि केही बोलेन। रक्सी खानु ब्राह्मणका निम्ति ज्यादै नै निन्दित छ, तिनै ब्राह्मणको बीचबाट उठेर कुनै ब्राह्मणले मलयलाई भने – यो सुकेको लठ्ठी लिएर तीर्थहरू घुम, हे ब्राह्मणका छोरा ! जब यसको आँकुरा पलाउनेछ, तब त्यो आँकुरा हेरेर मात्रै तिमी पवित्र हुनेछौ, हाँसेर यो शुद्ध नै हुँदैन पनि भने। मलयले यसलाई साँच्चै नै ठान्यो र उत्तिखेरै विश्वेश्वरलाई र ब्राह्मणहरूलाई दोहोऱ्याई दोहोऱ्याई नमस्कार गरेर लौरो लिई मलय तीर्थयात्रामा हिंड्यो ॥५६–५९॥

अनेकौं तीर्थहरू तीन वर्षसम्म घुम्दै मलय देवताहरूका लागि अप्राप्य श्लेष्मान्तक वनमा पुग्यो। वाग्वतीमा नुहाएर पशुपति प्रभुलाई र वज्रालाई दर्शन गरेर नारायण प्रभुलाई दर्शन गरी आशापूरेश्वरको दर्शन गर्नका निम्ति महावनमा पस्यो। पर्वतको फेदको जमिनमा त्यो सुकेको लौरी राखेर जब मलयले स्नान गऱ्यो, तब अङ्कुरोदय भयो। अनि परमाधम मलयले लठ्ठीमा आँकुरा देखेर आफूलाई पवित्र भएको ठान्यो र ज्यादै खुसी भयो ॥६०–६५॥

खुसी भएको मलयले मनमनै विचार गऱ्यो– यो पवित्र र ज्यादै दुर्लभ ठूलो ठाउँ हो, व्रतपूर्वक रहेर मैले यहीं महेश्वरको आराधना गर्छु, यस्तो निश्चय गरेर मलय त्यही वनमा बस्यो। कठोर नियममा रहेर भयङ्कर तपस्या गऱ्यो। हे तपोधन ! त्यसपछि त्यसको तपस्याले खुसी भएका भगवान् पार्वतीका पति, भूमि छेडेर महालिङ्गका रूपमा माथि आउनुभयो। हे सुव्रत मलय ! तिमी पवित्र छौ, वर माग। शम्भुको यो वचन सुनेर दण्ड झैं पछ्रेर प्रणाम गरी हात जोडेको र राम्रो आशय भएको मलयले भन्यो – हे परमेश्वर शङ्कर ! यहाँ डोलेश्वर नामको भएर सधैं भक्तहरूलाई अभय दिनका निम्ति बस्नुहोस् ॥६६–७१॥

खुसी भएका पार्वतीपतिले मलयको वचन सुनेर त्यस मलयलाई म यस वनमा रहनेछु भन्नुभयो – जो मानिसहरू भक्तिपूर्वक मलाई दर्शन गर्नेछन्, तिनीहरूको कैलाशवास हुन्छ यहाँ विचार गर्नैपर्दैन। मानिसले धारातीर्थमा नुहाएर डोलेश्वर प्रभुलाई हेरेपछि त्यस धीरले मेरो लोक कैलास पाउनेछ, यसमा केही संशय छैन। अष्टमी वा चतुर्दशीमा भक्तिपूर्वक जसले मलाई हेर्नेछन्, तिनीहरूको भोग र मोक्षको दाता म हुनेछु, यसमा केही शङ्का छैन। हे मलय ! तिमी मलाई भक्तिपूर्वक आराधना गरेर बस, योगीहरूमा उत्तम भएर परम पदमा जानेछौ। मलयलाई यति भनेर भगवान् शिव त्यसै लिङ्गमा अन्तर्धान हुनुभयो। मलय पनि पवित्र डोलेश्वरलाई आराधना गरेर पछि योगीहरूमा उत्तम भएर परम पदमा गयो ॥७६–७७॥

स्कन्दपुराण अन्तर्गत हिमवत्खण्डमा डोलेश्वरको उत्पत्तिवर्णन गर्ने पाँचौँ अध्याय पूर्ण भयो।

# अथ षष्ठोऽध्यायः

## सूर्यविनायकस्याविर्भावः (सूर्यविनायकको आविर्भाव)

मार्कण्डेय उवाच

डोलेशात् पश्चमे भागे प्रकाण्डवनमुत्तमम्। पनसैः सहकारैच नारङ्गैरुपशोभितम् ॥१॥
वकैः कुरवकाशोकैश्चम्पकैश्च विराजितम्। अश्वत्थैः कोविदारैश्च न्यग्रोधैरुपशोभितम् ॥२॥
मल्लिकामालतीकुन्दकुसुमैरुपशोभितम्। मत्तभ्रमरसंह्लादनिनादैरुपशोभितम् ॥३॥
तस्मिन् वने द्विजः कश्चिन्नाम्ना गुणनिधिर्मुनिः। तपसा सूर्यसङ्काशः क्षमया पृथिवीसमः ॥४॥
तपःस्वाध्यायनिरतो वेदवेदाङ्गपारगः। भार्या लीलावती तस्य मुनेः परमसुन्दरी ॥५॥
स्वामिभक्ता महाभागा सदाऽतिथ्यर्चने रता। प्राणनाथोऽभवत् पुत्रो मुनेः परमसुन्दरः ॥६॥
बहिश्चरः प्राण इव गुणवाँश्चारुलोचनः। दिने दिने वर्धते स शुक्लपक्षे यथा शशी ॥७॥
शिवपादाब्जानुरतो मुनिर्गुणनिधिः सदा। प्रकाण्डवनमाश्रित्य गत्वा पशुपतिं प्रभुम् ॥८॥
वाग्वत्याः पयसा स्नात्वा दृष्ट्वा भवनमेति च। दृष्ट्वा पशुपतिं नित्यं पाठयामास बालकम् ॥९॥
भार्या लीलावती तस्य प्रियाराधनतत्परा। पालयामास तनयं स्नेहेन परमेण सा ॥१०॥
एकदा प्राणनाथः स बभ्राम विपिने मुदा। ततः पपात धरणीपृष्ठे स मुनिबालकः ॥११॥
पतितं बालकं दृष्ट्वा मुनयः स्नेहतत्पराः। विहाय जपयागादि बालकं द्रष्टुमाययुः ॥१२॥
आश्रमेभ्यः स्त्रियः सर्वाः स्नेहाकुलितमानसाः। ऋष्याश्रमं हि तत् स्थानमद्यापि परिकीर्त्यते ॥१३॥
पतितो बालको यत्र जैमिने मुनिसत्तम। अङ्के संस्थापयामासुर्बालकं मुनिसत्तमाः ॥१४॥
व्यसुं दृष्ट्वा मुनिगणास्ततो गुणनिधिं ययुः। होमासक्तं गुणनिधिमूचुस्ते मुनिसत्तमाः ॥१५॥
मुने गुणनिधे पुत्रस्तव यः प्रियदर्शनः। अकस्मात् पतितो भूमौ द्रष्टुमायाहि तं मुने ॥१६॥
वज्रपातोपमं वाक्यं श्रुत्वा परमदारुणम्। पपात मोहितो भूमौ स मुनिः शोकमूर्च्छितः ॥१७॥
भार्या लीलावती तस्य निर्गत्य भवनात् सती। पतिमुत्थापयामास शोकोपहतचेतना ॥१८॥
यामो नाथ सुतो यत्र पतितो धरणीतले। भार्यावचनमाकर्ण्य मुनिरुत्थाय तत्क्षणात् ॥१९॥
जगाम भार्यासहितो बालको यत्र संस्थितः। मुनीनामङ्कगं दृष्ट्वा व्यसुं बालं ततो मुनिः ॥२०॥
हा हेति चोक्त्वा पतितो भार्यया सहितो मुनिः। तत उत्थापयामासुर्मुनयो मुनिसत्तमम् ॥२१॥
विललाप ततो दुःखी भार्यया सहितो मुनिः। प्राणनाथ कथं यासि मम प्राणान् विहाय च ॥२२॥
प्राणनाथ कथं यासि विहाय किल मातरम्। नय मां यत्र यासि त्वं जननीमपि दुःखिताम् ॥२३॥
नाकालमरणं चात्र न वा सर्पभयं भवेत्। न वा व्याघ्रभयं चात्र न च ग्रहभयं पुनः ॥२४॥
अनाथनाथो जगतां नाथः पशुपतिः प्रभुः। भार्यया सहितो बालममुमादाय सर्वथा ॥२५॥
गत्वाऽहं सर्वथा तत्र दृष्ट्वा पशुपतीश्वरम्। प्रायोपवेशनं कार्यं सर्वथा भार्ययाऽनया ॥२६॥
इति दृष्ट्वा मतिं कृत्वा ततो गुणनिधिर्द्विजः। गृहीत्वा बालकं स्कन्धे दुःखी पशुपतिं ययौ ॥२७॥
तमन्वयुर्मुनिगणाः शोकोपहतचेतसः। भार्या लीलावती तस्य रुदन्ती पृष्ठतो ययौ ॥२८॥
लीलावतीमन्वगच्छन् मुनीनामुत्तमाः स्त्रियः। रुदन्त्यः करुणायक्ताः शिवस्मरणतत्पराः ॥२९॥

उत्तीर्य वाग्वतीं पुण्यां मुनयः संशितव्रताः। द्वारे पशुपतेर्बालं स्थापयामासुरेव हि ॥३०॥
सस्त्रीका मुनयः सर्वे त्यक्तसन्ध्यादिकाः क्रियाः। प्रायोपवेशनं चक्रुः कीर्तयन्तः सदाशिवम् ॥३१॥
तत्र प्रायोपविष्टानां मुनीनां संयतात्मनाम्। सप्ताहानि व्यतीतानि सस्त्रीकानां तपोधन ॥३२॥
ततः पशुपतिर्देवः प्रभुर्वीक्ष्य तपोधन। दध्यौ कारुणिकः श्रीमान् हेतुना केन बालकः ॥३३॥
अकाले मृत एवायं मम क्षेत्रोत्तमे मुने। न सर्पभयमत्रास्ति न वा व्याघ्रभयं भवेत् ॥३४॥
ग्रहाणां न भयं चात्र क्षेत्रे परमदुर्लभे। ज्ञातं मया कारणं तु गणनाथः सुतो मम ॥३५॥
क्षेत्रस्नेहेन च मया विस्मृतो नात्र संशयः। प्रकाण्डवनमागत्य गणनाथेन सत्वरम् ॥३६॥
जिज्ञासार्थं मुनेर्बालनाशो विघ्नः कृतो यतः। अतस्तु प्रकटः कार्यो गणनाथो न संशयः ॥३७॥
एवं विचार्य देवेशस्तदा पशुपतिः प्रभुः। मुनीनापग्रतस्तुष्टः प्रकटोऽभूदुमापतिः ॥३८॥
दृष्ट्वा पशुपतिं साक्षान्मुनयः संशितव्रताः। पेतुश्च दण्डवद्भूमौ रोम्णा चाङ्कितविग्रहाः ॥३९॥
पतितांस्तान् मुनीन् दृष्ट्वा प्रोवाच गिरिजापतिः। न भेतव्यं मुनिगणाः शृणुध्वं वचनं मम ॥४०॥
श्लेष्मान्तकवनस्नेहान्मया पुत्रोऽपि विस्मृतः। दुःखाकुलितचित्तेन गणनाथेन कोपतः ॥४१॥
प्रकाण्डवनमागत्य गुप्तेन मुनिबालकः। मारितः प्रकटार्थं तु मम पुत्रेण तेजसा ॥४२॥
अतो बालकमादाय प्रकाण्डवनमोजसा। गच्छन्तु मुनयः सर्वे जीवयिष्यति बालकम् ॥४३॥
गणनाथो महातेजा नात्र कार्या विचारणा। उदिते तु दिवानाथे किरणः प्रथमो भुवि ॥४४॥
दृश्यते यत्र पुत्रो मे गुप्तरूपेण तत्र हि। इत्युक्त्वान्तर्हितो देवः स्वयं पशुपतिः प्रभुः ॥४५॥
मुनयोऽपि तदा बालमादायात्यन्तहर्षिताः। जग्मुः प्रकाण्डविपिनं सस्त्रीकाश्चातिवेगतः ॥४६॥
प्रकाण्डवनमागत्य स्थले संस्थाप्य बालकम्। उपवासान्मुनिगणो निशामेकां निनाय हि ॥४७॥
प्रातस्तु उदिते सूर्ये मयूखः प्रथमोऽपतत्। तस्मिँस्थले तदा जग्मुर्मुनयो धर्मतत्पराः ॥४८॥
अस्मिँस्थले गणाधीशो गुप्तरूपेण वर्तते। इति निश्चित्य मुनयोऽस्तुवन् देवं गजाननम् ॥४९॥
जय देवगणाधीश विघ्नराज नमोऽस्तु ते ॥५०॥
नमस्ते भक्तिगम्याय देवदेवाय ते नमः। पार्वतीप्रियपुत्राय नमो गजमुखाय च ॥५१॥
चतुर्हस्ताय देवाय नमः परशुधारिणे। भक्तानां भयहन्त्रे च नमस्ते मोदकप्रिय ॥५२॥
पाशहस्त नमस्तेऽस्तु देवदेव नमोऽस्तु ते। अस्माकं भक्तिहीनानां बालकं जीवय प्रभो ॥५३॥
प्रकटो भव देवेन्द्र पाहि नः शरणागतान्। इति तेषां स्तुतिं श्रुत्वा गणनाथो महाबलः ॥५४॥
भूमिं भित्त्वोदतिष्ठद्वै मुनीनामग्रतः प्रभुः। ततस्तु प्रणतान् दृष्ट्वा तन्मुनीन् संशितव्रतान् ॥५५॥
गणनाथो जगादोच्चैः शृणुध्व वचनं मम। रसमस्या लतायास्तु वदने बालकस्य तु ॥५६॥
स्थापयध्वं नेत्रयोश्च ममादेशान्मुनीश्वराः। गणनाथवचः श्रुत्वा मुनिर्गुणनिधिः स्वयम् ॥५७॥
रसं लताया वदने बालकस्य तदाऽर्पयत्। उत्तस्थौ सहसा बालः सुप्तोत्थितनरोपमः ॥५८॥
जयध्वनिर्मुनिमुखादुत्थितः सहसा तदा। पुष्पवृष्टिः पपातोर्व्यां नभसस्तु मनोहरा ॥५९॥
पुनः प्रोवाच गणपस्तान् मुनीन् हृष्टमानसान्। वरं ब्रूत महाभाग यद्वो मनसि संस्थितम् ॥६०॥
दण्डवत् प्रणिपत्योचुर्मुनयो गणनायकम्। अस्मिन् प्रकाण्डविपिने सदा तिष्ठ गणेश्वरः ॥६१॥
मुनीनां वचनं श्रुत्वा गणेशः प्राह तान्मुनीन्। सूर्यावलोकनान्नाम मुने सूर्यविनायकः ॥६२॥
स्थास्याम्यत्रैव विपिने भक्तानां भयहा सदा। चतुर्थ्यां मङ्गलदिने ये मां द्रक्ष्यन्ति मानवाः ॥६३॥
तेषां विघ्नभयं नृणां कदाऽपि न भविष्यति। गणनाथप्रभावं ते विज्ञाय मुनयस्तदा ॥६४॥
भूयो भूयो नमस्कृत्य प्रययुश्चोत्तरां दिशम्। प्रकाण्डविपिने नित्यं स्थितः सूर्यविनायकः ॥६५॥
तस्य दर्शनमात्रेण न विघ्नैः परिभूयते। उत्तरां दिशमागत्य नदीं प्राप्य मनोहराम् ॥६६॥
स्नानं चक्रुस्तदा बालसहिता मुनयो मुने। ततस्तैर्मुनिभिः सार्द्धं मुनिर्गुणनिधिर्मुदा ॥६७॥
मन्त्रयामास कुशलो ज्ञानं तत्त्वगुणाम्बुधिः। संसारे दुःखभूयिष्ठे यदीच्छेत् सुखमात्मनः ॥६८॥
मानवः स्थापयेल्लिङ्गं भुक्तिमुक्तिप्रदायकम्। शिवलिङ्गं स्थापयन्ति ये नरा भक्तितत्पराः ॥६९॥

तेषां ददाति सन्तुष्टः कैलासं पार्वतीपतिः। शिवस्यापि प्रियः पुत्रो गणेशो विघ्ननाशकः ॥७०॥
गणेशस्थापनाच्चापि न विघ्नैः परिभूयते। अत्राद्य नद्यास्तीरेऽहं गणनाथं महाप्रभुम् ॥७१॥
स्थापयिष्यामि मुनयः शिवलिङ्गं फलप्रदम्। श्रुत्वा गुणनिधेर्वाक्यं मुनयो दीर्घदर्शिनः ॥७२॥
साधु साधु तदा सर्वे सम्प्रोचुर्हृष्टमानसाः। स्थापयामास गणपं ततो गुणनिधिर्मुनिः ॥७३॥
ऐशान्यां विघ्नराजस्य शिवलिङ्गमनुत्तमम्। स्थापयामास स मुनिर्मुनिभिः परिवारितः ॥७४॥
जीवितो बालको यस्य गणनाथप्रसादतः। महामङ्गलमस्माकं जातं परमदुर्लभम् ॥७५॥
अतो गणेशनामेदं जातं मङ्गलविघ्नहा। मङ्गलेश्वरनामापि शिवस्य परिकीर्तितम् ॥७६॥
जातं मङ्गलहेरम्बषण्मुखेशैरिति ध्रुवम्। मङ्गलं नाम तत् तीर्थं महामङ्गलदायकम् ॥७७॥
तीर्थे मङ्गलके स्नात्वा दत्त्वा मङ्गलदायकम्। मङ्गलेश्वरमालोक्य सर्वपापैः प्रमुच्यते ॥७८॥
ऐशान्यां गणनाथस्य तिलमाधवपश्चिमे। मङ्गलेश्वरलिङ्गं तन् महापातकनाशनम् ॥७९॥
ततो गुणनिधिः पुत्रभार्यामुनिगणैर्युतः। मुदा परमया युक्तः स्वाश्रमं त्वरितो ययौ ॥८०॥
प्रादुर्भावं गणेशस्य शृणुयाद्योऽपि मानवः। शिवभक्तिमवाप्नोति न विघ्नैः परिभूयते ॥८१॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये श्रीसूर्यविनायकप्रादुर्भावो नाम षष्ठोऽध्यायः ॥६॥

---

मार्कण्डेयले भन्नुभयो – डोलेशदेखि पश्चिमपट्टि उत्तम प्रकाण्ड वन छ। त्यो वन कटहर, आँप र सुन्तलाहरूले शोभित भएको। वक, कुरवक (कठसरैया), अशोक, चाँपहरू भएको, पिप्पल, कोइरालो र वरहरूले राम्रो भएको त्यो वन। मल्लिका (वनमा हुने बेली फूल), चमेली र कुन्दफूलहरूले सिँगारिएको, मत्त भमराहरूका आनन्दपूर्ण भुनभुनाइले युक्त भएको थियो ॥१-३॥

त्यस वनमा गुणनिधि नामक कुनै ब्राह्मण मुनि तपस्याले गर्दा सूर्यजस्ता, क्षमाले गर्दा पृथ्वीजस्ता, तपस्याले र स्वाध्यायमा व्यस्त भएका, वेद र वेदाङ्गमा पारङ्गत भएका थिए। ती मुनिकी ज्यादै राम्री, स्वामिभक्ता, सौभाग्यवती र सधैं पाहुनापासाको सत्कारमा लागेकी लीलावती नामकी पत्नी थिइन्। मुनिको ज्यादै राम्रो प्राणनाथ नामको छोरो मानौं प्राण नै बाहिर निस्केको हिँडेको हो कि जस्तो, गुणी र राम्रा आँखा भएको भयो। त्यो छोरो शुक्लपक्षको चन्द्रमा भैँ दिनदिनै बढ्दै गयो। शिवको पाउरूपी कमलमा रत भएका गुणनिधि मुनि सधैं प्रकाण्ड वनमा रही, पशुपति प्रभु भएको ठाउँमा गएर वाग्वतीको पानीमा नुहाएर फेरी घरमा आएर बालक छोरोलाई पढाउँथे ॥४-९॥

प्रियको आराधनामा लागेकी तिनकी लीलावती भार्याले ज्यादै स्नेहपूर्वक छोरालाई लालनपालन गरिन्। एकदिन त्यो प्राणनाथ खुसीसाथ वनमा घुम्यो, त्यसपछि त्यो मुनिको बच्चा पृथ्वीमा लड्यो। लडेको बालकलाई देखेर मायाले जप, यज्ञ आदि छोडेर मुनिहरू र स्नेहले आकुल मन भएका सबै मुनिपत्नीहरू आश्रमबाट बालकलाई हेर्न आए। हे मुनिसत्तम जैमिनि! बालक जहाँ लड्यो, त्यो ठाउँ आजभोलि पनि ऋष्याश्रम भनिन्छ। मुनिहरूले बालकलाई काखमा लिए, मरेको देखेर मुनिहरू अनि गुणनिधि भएको ठाउँमा गए र होममा लागेका गुणनिधिलाई ती मुनिहरूले भने ॥१०-१५॥

हे गुणनिधि मुनि! तपाईंको जुन प्यारो छोरो हो, त्यो अकस्मात् भुईंमा लड्यो हेर्न आउनुहोस्। ज्यादै कठोर वज्रपात जस्तो वाक्य सुनेर बेहोस भएका र शोकले मूर्छा परेका ती मुनि भुईंमा लडे ॥१७॥ पीरले पिरिएकी तिनकी सती भार्या लीलावतीले घरबाट निस्केर नाथ! जहाँ छोरा भुईंमा लडेको छ, त्यहाँ जाऔं भनी पतिलाई उठाइन्। धर्मपत्नीको कुरा सुनेर मुनि उत्तिखेरै उठे र पत्नीसहित जहाँ बालक थियो, त्यहाँ गए। त्यसपछि मुनिहरूको काखमा रहेको मरेको बालकलाई देखेर मुनि हा! हा! भन्दै भार्यासहित भूमिमा लडे। त्यसपछि मुनिहरूले मुनि (गुणनिधि) लाई उठाए ॥१६-२१॥

अनि भार्यासँगसँगै मुनि विलाप गर्न थाले – प्राणनाथ! मेरो प्राणलाई छोडेर कसरी जान्छौ? प्राणनाथ! आमालाई छोडेर कसरी जान्छौ। तिमी जहाँ जान्छौ, मलाई र दुःखी आमालाई पनि लैजाऊ। न यहाँ अकालमृत्यु हुन्छ, अथवा न सर्पको नै डर छ, न यहाँ बाघको डर छ, फेरि न यहाँ ग्रहको नै डर छ। संसारका अनाथका नाथ भएका पशुपति प्रभु नै नाथ हुनुहुन्छ, भार्याका साथ यस बालकलाई लिएर गई केही गरेर पनि पशुपति प्रभुको दर्शन गरेर यिनै भार्याका साथ उपवास गर्नुपर्छ ॥२२-२६॥

यस्तो विचार गरेपछि दुःखी गुणनिधि ब्राह्मण बालकलाई काँधमा राखेर पशुपतितिर गए। दुःखित ऋषिहरू ती गुणनिधिलाई पछ्याउँदै गए, तिनकी भार्या लीलावती रुँदै पछि पछि गइन्। रुँदै करुणाले युक्त भएका र शिवलाई सम्भेका मुनिहरूका उत्तम स्त्रीहरू पनि लीलावतीको पछि गए। नियमित व्रत भएका मुनिहरूले पवित्र वाग्वतीमा उत्रेर पशुपतिको

ढोकामा बालकलाई राखे। सन्ध्यादि काम छोडेर स्त्रीसहित गएका सबै उनीहरूले हरघडी शिवको कीर्तन गर्दै उपवास गरे। हे तपोधन ! त्यहाँ उपवास गरेका, संयत आत्मा भएका, दुलही सहितका मुनिहरूको एक साता बित्यो ॥२७–३२॥

हे तपोधन जैमिनि ! त्यसपछि दयावान् पशुपति प्रभुले ध्यान गर्नुभयो – के कारणले मुनिको बालक यो मेरो उत्तम क्षेत्रमा अकालमा नै मर्‍यो ? हे मुनि ! न यहाँ सर्पको डर छ, न बाघको डर छ, न ग्रहहरूको भय छ यो पाइनसक्नु क्षेत्रमा। हो, मैले कारण त जानें– मेरो छोरो गणनाथ गणेश हो, ठाउँको मायाले त मैले निश्चय नै उनलाई बिर्सिसकेछु। प्रकाण्ड वनमा आएर गणनाथले चाँडै नै जिज्ञासाका लागि मुनिको बालक नाश गराए, विघ्न गरे। हो, यसै कारणले गणनाथलाई प्रकट गराउनुपर्छ ॥३३–३७॥

देवेश पशुपति प्रभुले यस्तो विचार गर्नुभयो र मुनिहरूका अगाडि खुसी भएका उमापति शिव प्रकट हुनुभयो। नियमित व्रत भएका र रोमाञ्चित भएका मुनिहरू साक्षात् पशुपतिलाई देखेर लौरो झैं भुइँमा परे। पाउ परेका ती मुनिहरूलाई देखेर गिरिजापतिले भन्नुभयो – हे मुनिहरू ! नडराओ, मेरो वचन सुन। श्लेष्मान्तक वनको मायाले मैले छोरालाई पनि बिर्सें, दुःखले आकुल चित्त भएको गुप्त रहेको मेरो छोरो गणनाथले रिसाएर प्रकट हुनका निम्ति प्रकाण्ड वनमा आई तेजको प्रयोग गरी मुनिबालकलाई मार्‍यो। यसै कारणले बालकलाई लिएर सबै मुनिहरू चाँडो प्रकाण्डवनमा जाओ, ठूलो तेज भएको गणनाथले बालकलाई बचाउनेछन्, यसमा विचारै गर्नुपर्दैन। सूर्य उदाएपछि, पहिलो किरण पृथ्वीमा परेपछि, जहाँ गुप्त रूपले मेरो छोरो देखिनेछ त्यहाँ नै जाओ। यति भनेर देव पशुपति प्रभु आफू अन्तर्धान हुनुभयो ॥३८–४५॥

अत्यन्त खुसी भएका स्त्रीसहितका मुनिहरू पनि बालकलाई लिएर छिट्ये छिट्ये प्रकाण्डवनमा गए। प्रकाण्डवनमा आएर एक ठाउँमा बालकलाई राखेर उपवास गरी मुनिहरूले एक रात बिताए। बिहान सूर्य उदाएपछि पहिलो किरण पर्‍यो, त्यहीं नै धर्ममा लागेका मुनिहरू गए। यस ठाउँमा गणेश गुप्त रूपले रहनुहुन्छ, यस्तो निश्चय गरेर मुनिहरूले हात्तीमुखे देवता अर्थात् गणेशको स्तुति गरे – देवताहरूका गणका स्वामी भएका हे विघ्नराज ! तपाईंको जय होस्, तपाईंलाई नमस्कार छ, त्रिनयन महादेवका हे प्यारा छोरा ! जय होस्, तपाईंलाई नमस्कार छ। भक्तिले गम्न सकिने तपाईंलाई नमस्कार छ, देवताका पनि देवता तपाईंलाई नमस्कार छ। हे पार्वतीका प्यारा छोरा ! तपाईंलाई नमस्कार छ। हात्तीको मुख भएका तपाईंलाई नमस्कार। चार हात भएका, बञ्चरो लिने तपाईंलाई नमस्कार छ। भक्तहरूको डर नाश गर्ने र लड्डु मन पराउने तपाईंलाई नमस्कार छ। यस्तै पासो हातमा लिएका, देवताका पनि देवता तपाईंलाई नमस्कार छ। हे प्रभु। भक्तिहीन हाम्रा बालकलाई बचाउनुहोस्। हे श्रेष्ठ देव ! प्रकट हुनुहोस्, शरणमा आएका हाम्रो रक्षा गर्नुहोस् ॥४६–५३½॥

तिनीहरूको यस्तो स्तुति सुनेर शक्तिशाली प्रभु गणनाथ भुइँ फोरेर मुनिहरूका अगाडि प्रकट हुनुभयो। त्यसपछि नियमित व्रत भएका ती मुनिहरूलाई निहुरिएको देखेर गणनाथले मेरो कुरा सुन भनेर ठूलो स्वरले भन्नुभयो – हे मुनीश्वरहरू ! मेरो आदेशबाट यस लहरोको रस बालकको मुख र आँखामा पनि राखिदेओ। गणनाथको बोली सुनेर मुनि गुणनिधि आफैंले लहराको रस बालकको मुखमा हालिदिए। त्यसपछि त्यो बालक उत्तिखेरै सुतेर उठेको मानिस झैं उठ्यो। आ–आफ्नो जयध्वनि मुनिहरूको मुखबाट निस्कियो। आकाशबाट सुन्दर पुष्पवृष्टि पृथ्वीमा भयो ॥५४–५९॥

खुसी भएका ती मुनिहरूलाई फेरि गणेशले भन्नुभयो – हे महाभागहरू ! तिमीहरूको मनमा जे छ, त्यो वर माग। लौरोझैं नुहेर मुनिहरूले गणेशलाई भने– हे गणेश्वर ! यस प्रकाण्ड वनमा सधैं रहनुहोस्। मुनिहरूको बोली सुनेर गणेशले ती मुनिहरूलाई भन्नुभयो– हे मुनि ! सूर्यको अवलोकनबाट पैदा भएकाले सूर्यविनायक नामले भक्तहरूको डर नाश गर्ने म सधैं यस वनमा रहनेछु। चौथी परेको मङ्गलबारका दिनमा जुन मानिसहरूले मलाई दर्शन गर्नेछन्, ती मानिसहरूलाई कहिल्यै विघ्नको डर हुँदैन। गणनाथको प्रभाव जानेर ती मुनिहरू बारम्बार नमस्कार गरेर उत्तर दिशापट्टि गए। प्रकाण्ड वनमा सधैं सूर्यविनायक रहनुभएको छ, उहाँको दर्शनमात्रले पनि विघ्नले सताउँदैन ॥६०–६५॥

हे मुनि ! उत्तर दिशामा आएर मनोहरा नदीमा पुगी बालकसहित मुनिहरूले नुहाए। अनि ती मुनिहरूका साथ तत्त्वगुणका समुद्र नै भएका सिपालु गुणनिधि मुनिले खुसीसाथ ज्ञानमन्त्रणा गरे – दुःखैदुःख भएको संसारमा मानिसले यदि आफ्नो सुखको इच्छा गर्छ भने भुक्ति तथा मुक्ति दिने शिवलिङ्गको स्थापना गर्नुपर्दछ। जुन भक्ति भएका मानिसहरूले शिवलिङ्गको स्थापना गर्छन्, तिनीहरूलाई खुसी भएका पार्वतीपति शिवले कैलास दिनुहुन्छ। शिवका पनि प्यारा छोरा, विघ्न नाश गर्ने गणेश हुन्, गणेशको स्थापना गर्नाले पनि विघ्नले सताउन सक्दैन। हे मुनिहरू ! यहाँ आज यस नदीको तीरमा म महाप्रभु गणनाथ र फल दिने शिवलिङ्गको स्थापना गर्छु। गुणनिधिको बोली सुनेर खुसी भएका सबै दीर्घदर्शी मुनिहरूले ठीक ठीक भने। त्यसपछि गुणनिधि मुनिले गणेशको स्थापना गरे। त्यस्तै मुनिहरूले युक्त भएका तिनै मुनिले गणेशको ईशानपट्टि उत्तम शिवलिङ्गको पनि स्थापना गरे ॥६६–७४॥

गणेशको प्रसादबाट बालक बाँच्यो, हाम्रो ज्यादै ठूलो मङ्गल भयो। यसै कारणले मङ्गलविघ्नहा (मङ्गलको विघ्न

नाश गर्ने) गणेशको नाम भएको छ। गणेश र षण्मुखको उपस्थिति हुनाले पक्का नै ठूलो मङ्गल दिने मङ्गल नामको त्यो तीर्थ भयो। मङ्गलतीर्थमा नुहाएर मङ्गलदायक वस्तुहरू चढाएर मङ्गलेश्वरको दर्शन गरेपछि सबै पापद्वारा छुट्छि। गणनाथको ईशानमा, तिलमाधवको पश्चिममा महापाप नाश गर्ने त्यो मङ्गलेश्वर लिङ्ग छ। त्यसपछि ठूलो हर्षले युक्त भएका गुणनिधि मुनि पुत्र, पत्नी र मुनिहरूका साथ आफ्नो आश्रममा गइहाले। गणेशको उत्पत्ति सुनेर पनि मानिसले शिवमुक्ति पाउँछ र उसलाई विघ्नहरूले पनि सताउँदैन ॥७५-८१॥

स्कन्दपुराण अन्तर्गत हिमवत्खण्डको नेपालमहात्म्यमा श्रीसूर्यविनायकको उत्पत्तिको वर्णनयुक्त छैठौं अध्याय सकियो।

# अथ सप्तमोऽध्यायः

तिलमाधवकीलेश्वरवाग्वतीनामुत्पत्तिकथा

(तिलमाधव, कीलेश्वर र वाग्वतीको उत्पत्तिकथा

जैमिनिरुवाच

भवन्मुखबहिर्यातां कथां पीयूषसन्निभाम्। शृण्वतो नास्ति मे तृप्तिर्मार्कण्डेय तपोधन ॥१॥
प्रष्टुमिच्छाम्यहं किञ्चित् पुनस्त्वां भक्तितत्परः। तिलमाधवनामेति कीर्तितं भवता हि यत् ॥२॥
तदुत्पत्तिमहं श्रोतुमिच्छामि मुनिसत्तम।

मार्कण्डेय उवाच

साधु साधु मुनिश्रेष्ठ जैमिने धर्मतत्पर ॥३॥
तिलमाधवनाम्नस्तु सम्भवं कथयामि ते। श्लेष्मान्तकवने रम्ये वाग्वतीतटिनीतटे ॥४॥
खेटकेऽस्मिंश्चाभवद्वै धर्मदत्तो वणिग्जनः। विष्णुभक्तः सुशीलोऽतिप्रियवाक् प्रियदर्शनः ॥५॥
सर्वदा विपणिद्रव्यमादाय स वणिक् सुधीः। ग्रामाद् ग्रामान्तरं याति जीविकार्थी गुणान्वितः ॥६॥
उत्तरायणसङ्क्रान्तावेकस्मिन् दिवसे वणिक्। भ्रमैंस्तिलान् समादाय मङ्गलेश्वरमागतः ॥७॥
मङ्गलेश्वरमालोक्य प्राचीं चैव ययौ दिशम्। अविदूरे हि संस्थाप्य तिलापुञ्ज वणिग्जनः ॥८॥
विक्रेतुमासने धीर आसन् वैष्णवसत्तमाः। यावल्लोकाः समायान्ति तिलग्रहणकामुकाः ॥९॥
तिलराशौ समुद्भूतस्तावद्देवो जनार्दनः। शङ्खचक्रगदापद्मधारिणं पीतवाससम् ॥१०॥
धर्मदत्तो वणिग्दृष्ट्वा प्रणनाम मुहुर्मुहुः। उत्थाय धर्मदत्तः स भक्तिनम्रो गुणान्वितः ॥११॥
पश्यतां सर्वलोकानां विष्णुदेहे विवेश सः। ततो जयध्वनिर्जाता लोकानां मुखपङ्कजात् ॥१२॥
नभसः पुष्पवृष्टिश्च पपात सुमनोहरा। तिलराशेः समुद्भूतो यतो देवा जनार्दनः ॥१३॥
तिलमाधवनामानं ततस्तस्य प्रतिष्ठितम्। तिलमाधवनामानं ये द्रक्ष्यन्ति नरा भुवि ॥१४॥
तेषां नारायणस्तुष्टः स्वस्थानं दास्यति स्वयम्। तिलमाधवनाम्ने यत् पुष्पं पत्रं फलं जलम् ॥१५॥
दीयते भक्तितो लोकैरक्षयं चोपजायते। सङ्क्रान्तिदिवसे भक्ता गोदुग्धैः स्नापयन्ति ये ॥१६॥
तिलमाधवदेवोऽसौ दास्यत्यत्र मनोरथान्। द्वादश्यां पत्रपुष्पादि ये यच्छन्तीह मानवाः ॥१७॥
तेषां वैकुण्ठवासः स्यान्नात्र कार्या विचारणा। मया ते कथितं पुण्यं तिलमाधवसम्भवम् ॥१८॥
तत् सर्वं कथयिष्यामि यदन्यच्छ्रोतुमिच्छसि। अन्यानि शिवलिङ्गानि श्लेष्मान्तकवने मुने ॥१९॥

जैमिनिरुवाच

तानि मुख्यानि कथय श्रोतुमुत्कण्ठितं मनः। अन्यानि कथयिष्यामि शृणु सावहितो मुने ॥२०॥

मार्कण्डेय उवाच

मुख्यस्थानानि सर्वाणि कथयिष्यामि ते पुनः। ऋष्याश्रमस्था मुनयो दृष्ट्वा गुणनिधेः सुतम् ॥२१॥
मृतं च जीवितं दृष्ट्वा शिवभक्तिपरा ययुः। ऋष्याश्रमस्था मुनयः समस्ता धर्मकोविदाः ॥२२॥
किञ्चिद्दूरं ततो दृष्ट्वा समारुह्यैकपर्वतम्। स्थापयामासुरतुलं शिवलिङ्गं मनोहरम् ॥२३॥
शिवभक्तिप्रभावज्ञा भक्त्या विधिपुरस्सरम्। अनन्तैर्मुनिभिर्यस्मात् स्थापितं लिङ्गमुत्तमम् ॥२४॥

तस्मादनन्तलिङ्गेति नाम तस्य व्यवस्थितम्। अनन्तलिङ्गमालोक्य सर्वपापैः प्रमुच्यते ॥२५॥
अनन्तलिङ्गं ये धीरा द्रक्ष्यन्ति सुमनोहरम्। प्राप्नुयुस्ते तदा लोके शिवभक्तिं सुदुर्लभाम् ॥२६॥
अनन्तलिङ्गभक्ता ये भक्तिष्यन्ति कलौ युगे। तेषां प्रीतो महादेवो दास्यतीह मनोरथान् ॥२७॥
चतुर्दश्यामथाष्टम्यां सङ्क्रान्तिदिवसे तदा। अनन्तलिङ्गं द्रक्ष्यन्ति तान् यास्यति महेश्वरः ॥२८॥
स्वर्णशृङ्गेश्वरो देवः कृष्णेन स्थापितः पुरा। कीलेश्वरोऽपि कृष्णेन स्थापितः स्वयमेव हि ॥२९॥
महेन्द्रदमनो दैत्यः प्रद्युम्नेन यदा हतः।

जैमिनिरुवाच

महेन्द्रदमनो दैत्यः प्रद्युम्नेन कथं हतः ॥३०॥
स्वर्णशृङ्गेश्वरो देवस्तथा कीलेश्वरः प्रभुः। कथं वाऽस्थापि तल्लिङ्गद्वयं कृष्णेन मे वद ॥३१॥

मार्कण्डेय उवाच

वक्ष्याम्यहमशेषेण कीलेश्वरसमुद्भवम्। स्वर्णशृङ्गेश्वरोत्पत्तिं दैत्योऽपि च यथा हतः ॥३२॥
चम्पकारण्यविषये नगरी श्वेतकाभिधा। अस्ति सर्वगुणैर्युक्ता शक्रस्येवामरावती ॥३३॥
तादृशी नगरी पृथ्व्यां दुर्लभा हि तपोधन। तस्यां पुर्यां महीपालः सूर्यकेतुर्नृपोत्तमः ॥३४॥
विष्णुभक्तोऽतिधर्मात्मा प्रजापालनतत्परः। दाता प्रियंवदो धीरः सत्यवाक् प्रियदर्शनः ॥३५॥
रिपुस्तस्याभवद्वीरो मिथिलाधिपतिर्महान्। हंसध्वज इति ख्यातो महाबलपराक्रमः ॥३६॥
आगत्य मिथिलाधीशो नगरीमुपरुध्य वै। सङ्ग्राममकरोदुग्रं सूर्यकेतुनृपेण हि ॥३७॥
पुराद्बहिर्विनिर्गत्य सूर्यकेतुर्नराधिपः। युयोधानेन बलिना मिथिलापतिना तदा ॥३८॥
हंसध्वजेन भूपेन सूर्यकेतुनरेश्वरः। पराजितोऽतिबलिना हत्वा वीराननेकशः ॥३९॥
हतान् वीरांस्ततो दृष्ट्वा सूर्यकेतुर्नराधिपः। पलायनपरो भूत्वा विवेश नगरीं स्वकाम् ॥४०॥
प्रविश्य नगरीं राजा सूर्यकेतुर्हतप्रभः। चिन्तयामास हृदये कान्दिशीको मुहुर्मुहुः ॥४१॥
किं कर्त्तव्यं क्व गन्तव्यं क्व स्थातव्यमतः परम्। हंसध्वजो महावैरी पुररोधं चकार ह ॥४२॥
पराजितोऽस्मि शूरेण क्व गन्तव्यमतः परम्। यावच्चितां नरपतिः करोति बहुधा मुने ॥४३॥
तावत् खलु समायातो नारदो मुनिसत्तमः। आगतं नारदं दृष्ट्वा सूर्यकेतुर्महीपतिः ॥४४॥
विधिवत् पूजयामास भक्तिमन्नप्रकन्धरः। विश्रान्तं नारदं वीक्ष्य राजा प्राहातिदुःखितः ॥४५॥
हंसध्वजेन नगरी रुद्धा मे मुनिसत्तम। भग्नञ्च नगरं जातं स्थातुमत्र न शक्यते ॥४६॥
कस्मिँस्थले निवासो मे कर्तव्यस्तद्वदस्व मे। राज्ञो वचनमाकर्ण्य नारदः प्राह तं नृपम् ॥४७॥

नारद उवाच

मृगेन्द्रशिखरं गत्वा निवासं कुरु पार्थिव। यत्रोत्पन्ना महारम्या वाग्वती सरिता वरा।
तस्मिन् स्थाने सुगुप्तं च निवासं कुरु भूपते ॥४८॥

सूर्यकेतुरुवाच

मृगेन्द्रशिखरे रम्ये वाग्वती सरिता वरा ॥४९॥
मुनीन्द्र कथमुत्पन्ना तदाख्याहि विशेषतः।

नारद उवाच

मृगेन्द्ररूपमास्थाय भगवान् हरिरीश्वरः ॥५०॥
हिरण्यकशिपुं दैत्यं जघान नृपसत्तम। प्रह्लादं तु परित्रातुं भक्तिवश्यो जनार्दनः ॥५१॥
दैत्यं हत्वा परिश्रान्तो हिमवच्छिखरं ययौ। तमन्वेष्टुं महाभक्तो हिरण्यकशिपोः सुतः ॥५२॥
जपन् नृसिंहनामानि हिमवच्छिखरं ययौ। मृगेन्द्ररूपमास्थाय हिमवच्छिखरं नृप ॥५४॥
अदृष्ट्वा नरसिंहं तु तप उग्रं चकार ह। समाः सहस्रं दैत्येन्द्रस्तपस्तेपे सुदारुणम् ॥५५॥
ततस्तुष्टो महादेवो हास्यमुच्चैश्चकार हि। हरहाससमुद्भूता निर्गता गिरिगह्वरात् ॥५६॥
फेनोर्मिमालाधवला नदी पुण्यजलाऽमला। शङ्करो वचनं चेद प्राह दानवपुङ्गवम् ॥५७॥

वचनान्मम दैत्येन्द्र बहिर्याता यतो नदी । अतोऽस्या वाग्वती नाम भविष्यति न संशयः ॥५८॥
मृगेन्द्ररूपमास्थाय विष्णुरत्र यतः स्थितः । अतस्तु वैष्णवं क्षेत्रमिदं लोके भविष्यति ॥५९॥
अस्योर्ध्वभागे मत्स्थानं शिवलिङ्गमयं शुभम् । भविष्यति यतो लोकास्ततः शिवपुरीं जगुः ॥६०॥
प्रह्लाद गच्छ दैत्येन्द्र विष्णुभक्तिर्दृढाऽस्तु ते । दैत्यराजाधिपो भूत्वा राज्यं कुरुष्व पैतृकम् ॥६१॥
एतत् तु वैष्णवं स्थानं मृगेन्द्रशिखराह्वयम् । हिरण्यकशिपुं हत्वा विश्रान्तो नृहरिर्यतः ॥६२॥
त्वया दैत्यपते तप्तं विष्णुभक्तेन दारुणम् । मम हास्याच्च सम्भूता वाग्वती परमा नदी ॥६३॥
अस्योर्ध्वभागे जातानि लिङ्गानि मम शक्तितः । वाग्वतीप्रभवे स्नात्वा दृष्ट्वा शिवपुरीं नरः ॥६४॥
जन्मान्तरकृतात् पापान्मुच्यते नात्र संशयः । इत्युक्त्वाऽन्तर्हितो देवः सगणो हि वृषध्वजः ॥६५॥
तुष्टः प्रह्लाददैत्योऽपि जगाम भवनं स्वकम् । मृगेन्द्रशिखरं याहि सूर्यकेतो नरेश्वर ॥६६॥
श्रीकृष्णस्यानुभावेन पुनरेष्यसि श्वेतकाम् । सशरीरो दिवं गन्ता भवानन्ते न संशयः ॥६७॥
इत्युक्त्वा नारदो यातो नृपेण परिपूजितः । नारदस्योपदेशेन सूर्यकेतुनरेश्वरः ॥६८॥
चन्द्रावत्या दुहित्रा च भार्यया च समन्वितः । शूरैरनेकैः संयुक्तो मृगेन्द्रशिखरं ययौ ॥६९॥
दृष्ट्वा मृगेन्द्रशिखरं वाग्वतीं प्रविलोक्य च । तत्रैव वसतिं चक्रे मुदा परमया युतः ॥७०॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये सप्तमोऽध्यायः ॥७॥

---

जैमिनिले भन्नुभयो – हे तपोधन मार्कण्डेय ! तपाईंको मुखबाट बाहिर आएको अमृत जस्तो कथा श्रवण गर्ने मेरो तृप्ति नै हुँदैन । भक्तिमा तत्पर भएका तपाईंलाई फेरि सोध्न चाहन्छु– तिलमाधव नाम भनेर जुन तपाईंले भन्नुभयो, हे मुनिसत्तम ! तिनको उत्पत्ति सुन्न इच्छा गर्दछु ॥१–२॥

मार्कण्डेयले भन्नुभयो – धर्मतत्पर मुनिश्रेष्ठ हे जैमिनि ! ठीक छ, तपाईंलाई तिलमाधव नामको उत्पत्ति भन्दछु । वाग्वती नदीको तीरमा रहेको रमणीय यो श्लेष्मान्तक वननिरको सानो गाउँमा, विष्णुभक्त, सुशील, मीठो बोल्ने, देख्दैमा सुन्दर धर्मदत्त व्यापारी थियो । गुणले युक्त भएको, व्यापारद्वारा जीविका चलाउने त्यो सुधो व्यापारी सधैं बेच्ने चीज लिएर एक गाउँबाट अर्को गाउँ जान्थ्यो । एक उत्तरायण–सङ्क्रान्ति अर्थात् माघे सङ्क्रान्तिका दिन घुम्दै त्यो व्यापारी तिलहरू लिएर मङ्गलेश्वरमा आयो ॥३–७॥

मङ्गलेश्वरको दर्शन गरेर पूर्व दिशापट्टि गयो र त्यो धीर व्यापारी नजिकै तिलहरू राखेर बेच्न बस्यो । त्यहाँ वैष्णवहरू थिए । जब तिल लिन चाहने वैष्णव मानिसहरू आएको समयमा तिलको थुप्रोमा देव जनार्दन विष्णु उत्पन्न हुनुभयो । धर्मदत्त व्यापारीले शङ्ख, चक्र, गदा र पद्म लिनुभएका, पहेंला वस्त्र धारण गर्नुभएका माधवलाई देखेर बारम्बार प्रणाम गऱ्यो । भक्तिले नम्र भएको, गुणी त्यो धर्मदत्त उठेर हेरिरहेका सबै मान्छेहरूको अगाडि नै विष्णुको शरीरमा एकाकार भयो । अनि मानिसहरूको मुखरूपी कमलबाट जय शब्द निस्क्यो, आकाशबाट पनि राम्रो पुष्पवृष्टि भयो । देव जनार्दन तिलको थुप्रोबाट उत्पन्न भएको हुनाले उहाँको नाम तिलमाधव भनेर राखियो ॥८–१३½॥

जुन मानिसहरूले पृथ्वीमा तिलमाधव नामक देवतालाई हेर्नेछन्, तिनीहरूलाई खुसी भएका नारायणले आफ्नो आफैले स्थान दिनेछन् । मानिसहरूले तिलमाधवमा फूलपाती, फल, जल भक्तिपूर्वक दिइन्छ भने अक्षय हुन्छ । जुन भक्तले सङ्क्रान्तिको दिनमा गाईको दूधले तिलमाधवलाई नुहाइदिन्छन्, तिनीहरूलाई तिलमाधवले इच्छित वस्तुहरू दिनुहुनेछ । जो मानिसहरू द्वादशीमा फूलपाती चढाउँछन्, तिनीहरूको वैकुण्ठवास हुन्छ, यसमा विचारै गर्न पर्दैन । मैले तपाईंलाई पवित्र तिलमाधवको उत्पत्तिकथा भनें, अब अरू जुन कुरा सुन्न इच्छा गर्नुहुन्छ, त्यो सबै भन्नेछु ॥१४–१९॥

जैमिनिले भन्नुभयो – हे मुनि मार्कण्डेय ! श्लेष्मान्तक वनमा रहेका अरू ती मुख्य शिवलिङ्गहरू भन्नुहोस्, मेरो मन सुन्न उत्कण्ठित भइरहेछ ॥२०॥

मार्कण्डेयले भन्नुभयो– हे मुनि जैमिनि ! सावधानपूर्वक सुन्नुहोस्, अरू सबै मुख्य स्थानहरू भन्छु । ऋष्याश्रममा रहेका शिवभक्त मुनिहरू मरेको गुणनिधिको छोरोलाई बाँचेको देखेर गए । ऋष्याश्रममा रहेका धर्ममा कुशल भएका सबै मुनिहरू केही ट्याढा एउटा पर्वत देखी त्यहाँ चढेर शिवभक्तिको प्रभाव जान्ने तिनीहरूले विधिपूर्वक अपरिमेय सुन्दर शिवलिङ्गको स्थापना गरे । अनन्त (ज्यादै धेरै) मुनिहरूले उत्तम लिङ्ग स्थापना गरेको हुनाले त्यसको नाम अनन्तलिङ्ग भनेर व्यवस्था गरियो । अनन्तलिङ्गको दर्शन गर्नाले सबै पापबाट छुटिन्छ । जुन धीरहरूले सुन्दर अनन्तलिङ्गको दर्शन गर्नेछन्, तिनीहरूले संसारमा पाइनसक्नु शिवभक्ति पाउनेछन् । कलियुगमा जो अनन्तलिङ्गका भक्त हुनेछन्, तिनीहरूलाई खुसी भएका महादेवले

यहाँ इच्छित वस्तुहरू दिनेछन्। ज-जसले चतुर्दशीमा, अष्टमीमा र सङ्क्रान्तिको दिनमा अनन्तलिङ्गको दर्शन गर्नेछन्, ती भएको ठाउँमा महेश्वर जानुहुन्छ। कृष्णले पहिल्यै स्वर्णशृङ्गेश्वर देवको पनि स्थापना गरी कीलेश्वरको पनि आफैँले नै स्थापना गर्नुभयो जुन बेला महेन्द्रदमन नामको दैत्यलाई प्रद्युम्नले मारेका थिए॥२१-२९॥

जैमिनिले भन्नुभयो – महेन्द्रदमन दैत्यलाई प्रद्युम्नले कसरी मारे ? स्वर्णशृङ्गेश्वर देव तथा कीलेश्वर प्रभु ती दुवैका लिङ्गहरूको स्थापना कृष्णले कसरी गर्नुभयो ? मलाई भन्नुहोस्॥३०-३१॥

मार्कण्डेयले भन्नुभयो – कीलेश्वरको उत्पत्ति, स्वर्णशृङ्गेश्वरको उत्पत्ति तथा जसरी दैत्य पनि मारियो, सबै म भन्छु। चम्पकारण्यमा सबै गुणले युक्त भएको, इन्द्रको अमरावती जस्तो श्वेतका नाम गरेको शहर छ। हे तपोधन जैमिनि ! त्यस्तो शहर त पृथ्वीमा पाउनै कठिन छ। त्यस शहरमा विष्णुका भक्त, ज्यादै धर्मात्मा, प्रजालाई पालन गर्न सबै तत्पर भएका, दानी, मीठो बोल्ने, धीर, साँचो बोल्ने र देख्दैमा राम्रा राजाहरूमा उत्तम सूर्यकेतु नामका राजा भए॥३२-३५॥

तिनका शत्रु वीर र ठूलो बल अनि पराक्रम भएका हंसध्वज नामका मिथिलाका ठूला राजा थिए। मिथिलाका राजा आएर शहरलाई रोकेर सूर्यकेतु राजासँग भयङ्कर लडाईं गरे। त्यस बेला सूर्यकेतु राजा शहरबाट बाहिर निस्केर लड्न चाहने बलिया मिथिलापतिसँग युद्ध गरे। अनेकौं वीरहरू मारी ज्यादै बल भएका हंसध्वज राजाद्वारा सूर्यकेतु राजा हराइए॥३९॥ मारिएका वीरहरूलाई देखेर सूर्यकेतु राजा भागी आफ्नो शहरमा पसे॥३६-४०॥

तेज (शक्ति) खतम भएका, कता जाउँ र के गरुँ भएका सूर्यकेतु राजाले शहरमा पसेर बारम्बार मनमनै विचार गरे। अब के गरुँ ? कहाँ जाऊँ ? कहाँ बसूँ ? महावैरी हंसध्वजले शहर रोक्यो। शूराले जितिएको छु, अब कहाँ जाऊँ ? हे मुनि ! धेरै प्रकारले जब राजाले चिन्ता गरे। त्यस बेला उत्तम मुनि नारद आए। आएका नारदलाई देखेर भक्ति भएका र नुहेका सूर्यकेतु राजाले विधिपूर्वक उनको पूजा गरे। थकाइ मरेका नारदलाई हेरेर ज्यादै दुःखी भएका राजाले भने। हे मुनिसत्तम ! हंसध्वजले मेरो शहर रोकियो, शहर पनि भताभुङ्ग भयो, यहाँ बस्न सकिँदैन, कुन ठाउँमा वास गरुँ ? त्यो मलाई भन्नुहोस्। राजाको बोली सुनेर ती राजालाई नारदले भन्न लागे॥४१-४७॥

नारदले भने – मृगेन्द्रशिखरमा गएर बस्नुहोस्, भूमिका मालिक हे राजा ! जहाँ नदीहरूमा श्रेष्ठ वाग्वती नदी उत्पन्न भएकी छन्, त्यहीं नै गुप्तवास बस्नुहोस्॥४८॥

सूर्यकेतुले भने- हे मुनीन्द्र ! राम्रो मृगेन्द्र शिखरमा नदीहरूमध्ये श्रेष्ठ वाग्वती कसरी उत्पन्न भइन् ? त्यो मलाई विशेष रूपले भन्नुहोस्॥४९½॥

नारदले भने- हे राजा ! सिंहको रूप लिएर भगवान् हरिले हिरण्यकशिपु दैत्यलाई मार्नुभयो। प्रह्लादको रक्षा गर्नका लागि भक्तिले वश गरिने जनार्दन दैत्यलाई मारेर थाकेको हुँदा हिमालयको शिखरमा जानुभयो र उहाँलाई खोज्नका लागि महाभक्त हिरण्यकशिपुका छोरा प्रह्लाद नृसिंहको नाम जप्दै हिमालयको शिखरमा गए। मृगेन्द्र (सिंह) का रूपमा रहेर हिमालयको टाकुरामा हरि रहनुभयो, यसै कारणले त्यस पर्वतलाई मृगेन्द्रशिखर भनेर चिन्दछन्। हे राजा सूर्यकेतु! त्यसपछि प्रह्लादले पनि मृगेन्द्रशिखरमा गएर नरसिंहलाई नदेखी उग्र तपस्या गरे। दैत्येन्द्र प्रह्लादले हजार वर्ष कठोर तपस्या गरे, त्यसपछि खुसी भएका महादेवले ठूलो हाँसो हाँस्नुभयो। शिवको हाँसोबाट निस्केकी फीँज र भेलले धवल वर्ण भएकी, पवित्र जल भएकी कञ्चन नदी पर्वतको गुफाबाट निस्किइन्॥५०-५७॥

शङ्करले श्रेष्ठ दानव प्रह्लादलाई यो वचन भन्नुभयो – हे दैत्येन्द्र ! मेरो वचनबाट नदी बाहिर आएकी हुनाले निश्चय यिनको नाम वाग्वती हुनेछ॥४८-५८॥ मृगेन्द्रको रूप लिएर यहाँ विष्णु रहेका हुनाले संसारमा यो ठाउँ वैष्णवक्षेत्र मानिनेछ॥५९॥ यसको मास्तिर शिवलिङ्गमय मेरो ठाउँ हुनेछ, यसैले नै लोकले यसलाई शिवपुरी भन्दछन्॥६०॥ हे दैत्येन्द्र प्रह्लाद ! तिम्रो विष्णुभक्ति दृढ रहोस्, अब दैत्यहरूको राजा भएर पैतृक राज्य गर॥६१॥ हिरण्यकशिपुलाई मारेर नृसिंहले आराम लिएको हुनाले यो मृगेन्द्रशिखर नामक वैष्णवक्षेत्र भयो॥६२॥ (यहीं) तपाईं विष्णुभक्त दैत्यराजले कठोर तपस्या गर्नुभयो, मेरै हाँसोबाट परम वाग्वती नदी निस्किन्, मेरो शक्तिबाट यसैको माथि मेरा लिङ्गहरू उत्पन्न भए। वाग्वती उत्पन्न भएको ठाउँमा नुहाएर शिवपुरीलाई हेरेपछि जन्मान्तरमा गरेको पापबाट मानिस निश्चय नै मुक्त हुन्छ। यति भनेर गणसहित शिवजी अन्तर्धान हुनुभयो॥५८-६४॥

खुसी भएका प्रह्लाद दैत्य पनि आफ्नो घर गए। हे सूर्यकेतु ! मृगेन्द्रशिखरमा जानुहोस्, श्रीकृष्णको कृपाले फेरी श्वेतकामा आउनुहुनेछ। तपाईं अन्तमा निश्चय नै सशरीर स्वर्ग जानुहुनेछ, यति भनेर राजाले पूजा गरिएका नारद गए। नारदको उपदेशद्वारा सूर्यकेतु राजा चन्द्रावती छोरी, भार्या र अनेकौं शूरहरूसँग मृगेन्द्रशिखरमा गए। मृगेन्द्रशिखरलाई र वाग्वतीलाई पनि देखेर ठूलो हर्षले युक्त भएका छँदा त्यहाँ नै वसोवास गरे॥६५-७०॥

स्कन्दपुराण अन्तर्गत हिमवत्खण्डमध्ये नेपालमाहात्म्यको सातौं अध्याय पूर्ण भयो।

# अथ अष्टमोऽध्यायः

महेन्द्रदमनकथा (महेन्द्रदमनको कथा)

मार्कण्डेय उवाच

एतस्मिन्नन्तरे दैत्यो महेन्द्रदमनाभिधः। हरमाराध्य तपसा त्रैलोक्ये दुर्जयोऽभवत् ॥१॥
जित्वा मेहन्द्रसहितान् देवान् समरदुर्जयः। अधस्ताच्चन्दनाशैलोत्तरस्यां दिशि सुप्रभाम् ॥२॥
दैत्यश्चक्रे पुरीं रम्यां नानारत्नचयैर्युताम्। महेन्द्रदमनस्यासीद् भगिनी मृगलोचना ॥३॥
नाम्ना प्रभावती देवी तत्तुल्या नैव भामिनी। आराधिता तया देवी वत्सला सुरपूजिता ॥४॥
सन्तुष्टा हिमवत्कन्या प्राह देवीं प्रभावतीम्। वरं वरय सुश्रोणि यत् ते मनसि काङ्क्षितम् ॥५॥
श्रुत्वा नगेन्द्रजावाक्यं प्राह देवीं प्रभावती। त्वमेव देवि जानासि प्राणिनां हृदयस्थितम् ॥६॥
श्रुत्वा प्रभावतीवाक्यं तां प्राह गिरिनन्दिनी। त्वच्चित्तस्थो मया ज्ञातः पुरुषो मृगलोचने ॥७॥
प्रद्युम्नः कृष्णतनयः स ते भर्त्ता भविष्यति। इति दत्त्वा वरं देवी सद्योऽन्तर्धानमागता ॥८॥
प्रभावती वरं लब्ध्वा सुप्रभां नगरीं ययौ। उद्यानं दानवश्चक्रे चन्दनागिरिमूर्धनि ॥९॥
प्रभावतीविनोदाय नन्दनाकारसुन्दरम्। मृगेन्द्रशिखराद्रम्याद् बहिर्यातां तु वाग्वतीम् ॥१०॥
रुरोध दानवो दर्पाद् गिरिणा गिरिसन्निभः। वाग्वत्यां चावरुद्धायां श्लेष्मान्तकवनं महत् ॥११॥
ह्रदीभूतं सुप्रभास्थो मुमुदे दानवो भृशम्। महेन्द्रदमनो दैत्यः सुप्रभायां स्वयं स्थितः ॥१२॥
मृगेन्द्रशिखरे चैव सूर्यकेतुर्नृपः स्थितः। एतन्मध्ये जलमयं कुमुदोत्पलमण्डितम् ॥१३॥
तडागवच्च तज्जातं श्लेष्मान्तकवनं महत्। महेन्द्रदमनं दैत्यं दृष्ट्वा परमदुर्जयम् ॥१४॥
रत्नानि दिव्यान्यादाय स्वयं भेजे नृपस्तदा। सूर्यकेतुस्तदा ज्ञात्वा निर्भयो वसति स्म ह ॥१५॥
कश्चिद्दैत्यो दानवस्य मृगेन्द्रशिखरं ययौ। तेन दृष्टा सुता तस्य सूर्यकेतोर्महीभुजः ॥१६॥
क्रीडन्ती विपिने बाला रम्भातोऽप्यतिसुन्दरी। दृष्ट्वा कन्यां नरपतेर्दानवस्त्वरितस्तदा।
महेन्द्रदमनस्याग्रे कथयामास विस्तरात् ॥१७॥

दानव उवाच

शृणु दैत्येन्द्र मद्वाक्यं मृगेन्द्रशिखरे मया ॥१८॥
भ्रमता सूर्यकेतोस्तु कन्या दृष्टा मनोहरा। नैतादृशी मानुषीषु सुन्दरी वर्त्तते क्वचित् ॥१९॥
स्त्रीरत्नमतुलं कन्या सूर्यकेतोर्महीभुजः। रत्नभोक्ता भवाँल्लोके सा च स्त्रीरत्नमुत्तमम् ॥२०॥
तस्या योग्यो भवान् भर्त्ता नान्यः कश्चिन् महीतले। इति तस्य वचः श्रुत्वा महेन्द्रदमनो मुदा ॥२१॥
युक्तः परमया प्राह तं दैत्यं दृढविक्रमम्।

महेन्द्रदमन उवाच

साधु साधु त्वया प्रोक्तं मत्पुरो दनुजोत्तम ॥२२॥
सूर्यकेतुः सुतां मह्यं ददाति च यथा किल। तथा प्रकारो भवता क्रियतां दानवोत्तम ॥२३॥
मृगेन्द्रशिखरं गत्वा त्वया दानवसत्तम। मदर्थे याच्यतां कन्या सूर्यकेतु नराधिपम् ॥२४॥
तस्याज्ञां प्राप्य दैत्योऽसौ मृगेन्द्रशिखरं ययौ। ददर्श भूपं दैत्योऽसौ सभायां मन्त्रिभिर्युतम् ॥२५॥
मन्त्रिभिर्दानवं श्रुत्वा दानवं वाक्यमब्रवीत्। किमर्थमागतं दैत्य त्वया तदिह कथ्यताम् ॥२६॥
नृपतेर्वचनं श्रुत्वा दानवो वाक्यमब्रवीत्। महेन्द्रदमनो राजा दैत्यानां वाणनन्दनः ॥२७॥
ते कन्यां प्रार्थयत्येनां तस्मै दातुं त्वमर्हसि। महेन्द्रदमनो रत्नभोक्ता शम्भोः प्रसादतः ॥२८॥
चन्द्रावती च स्त्रीरत्नं तस्माद्दातुं त्वमर्हसि। इति दूतवचःश्रुत्वा सूर्यकेतुर्भयान्वितः ॥२९॥

सूर्यकेतुरुवाच

विचार्य मनसा वाक्यं दूतमेवमुवाच ह। भवान् यदाह तत् सर्वं सत्यमेव न संशयः ॥३०॥
महेन्द्रदमनो राजा त्रैलोक्याधिपतिः प्रभुः। स चेत् प्रार्थयते कन्यां कोऽस्ति धन्यतरो मम ॥३१॥

चन्द्रावती च मे कन्या परमत्यन्तबालिका। यदा विवाहसमयो मत्कन्याया भविष्यति ॥३२॥
महेन्द्रदमनस्याज्ञा कर्तव्यैव न संशयः। इति भूपवचः श्रुत्वा दूतः संहृष्टमानसः ॥३३॥
महेन्द्रदमनं गत्वा ततः सर्वं न्यवेदयत्। सूर्यकेतुर्महीपालश्चिन्तयामास दुःखितः ॥३४॥
कष्टात् कष्टतरं लब्धं किं कर्तव्यमतः परम्। श्वेतकायाः परित्यागो दैत्यः प्रार्थयते सुताम् ॥३५॥
स्थातुं नैव मया शक्यं मृगेन्द्रशिखरे पुनः। इति चिन्ताकुलो यावत् सूर्यकेतुर्नराधिपः ॥३६॥
तावत् तत्र समायातो नारदो मुनिसत्तमः। तमागतमभिप्रेक्ष्य सूर्यकेतुर्नराधिपः ॥३७॥
भक्तितः पूजयामास यथाशास्त्रपुरस्सरम्। उवाच नारदं भूपः कृतासनपरिग्रहम् ॥३८॥
महेन्द्रदमनो दैत्यः कन्यां प्रार्थयते मम। मृगेन्द्रशिखरे स्थित्वा कथं दैत्येन विग्रहः ॥३९॥
नारदात्र प्रतीकारः कर्तव्यस्तु कथं मया। इति भूपवचः श्रुत्वा नारदो वाक्यमब्रवीत् ॥४०॥

नारद उवाच

सूर्यकेतो नृपश्रेष्ठो न भेतव्यं त्वया पुनः। चन्द्रावती तव सुता प्रद्युम्नाय प्रदीयताम् ॥४१॥
द्वारकायां मया गत्वा दृष्ट्वा च मधुसूदनम्। रौक्मिणेय इहानेयो भयमुत्सृज्यतामिति ॥४२॥
नारदस्य वचः श्रुत्वा सूर्यकेतुर्नरेश्वरः। प्राह तं नारदमुनिं त्रातोऽस्मि भवता सदा ॥४३॥
भूपमामन्त्र्य मुनिर्जगामाकाशवर्त्मना। गच्छता तेन मुनिना चन्दनागिरिमूर्धनि ॥४४॥
उद्यानविषये दृष्टा दैत्यकन्या प्रभावती। प्रभावत्याश्च सविधे आजगाम स नारदः ॥४५॥
प्रभावती नमस्कृत्य नारदं प्राह सुन्दरी। किमागमनकृत्यं ते तपोधन वदस्व मे ॥४६॥

नारद उवाच

तुभ्यं दत्तो वरो देव्या प्रद्युम्नस्ते पतिः पुरा। भविष्यति न चाद्यापि नैति त्वां कृष्णनन्दनः ॥४७॥
चन्द्रावती सूर्यकेतोः कन्या परमसुन्दरी। कल्पिता कृष्णपुत्राय भ्राता तां याचते तव ॥४८॥
प्रद्युम्नानयनार्थाय गम्यते द्वारकापुरी। प्रद्युम्नोऽपि समागत्य त्वया योगमुपैष्यति ॥४९॥

प्रभावत्युवाच

नारदस्य वचः श्रुत्वा मुनिं प्राह प्रभावती। सर्वं त्वं हि विजानासि त्रिकालज्ञ मुनीश्वर ॥५०॥
विलद्वारि महाभीमः शङ्खनामा महासुरः। वाग्वतीद्वारबन्धस्य रक्षकः कच्छपासुरः ॥५१॥
भ्राताऽपि मम दुर्द्धर्षः प्रद्युम्नः कथमेष्यति। प्रभावतीवचः श्रुत्वा नारदः प्राह तां पुनः ॥५२॥

नारद उवाच

यत् प्रोक्तं मृगशावाक्षि सत्यमेव न संशयः। सुप्रभा नैव गन्तव्या स्थीयतामत्र भामिनि ॥५३॥
तव भ्रातुः प्रतापेन भयमत्र न विद्यते। इत्युक्त्वा प्रययौ धीमान् नारदो द्वारकां पुरीम् ॥५४॥
प्रभावती स्थिता तत्र चन्दनागिरिमूर्धनि। स गत्वा द्वारकां शीघ्रं सभायां कृष्णमास्थितम् ॥५५॥
ददर्श नारदो धीमान् यदुभिः परिवारितम्। आगतं नारदं वीक्ष्य यथाविधिपुरस्सरम् ॥५६॥
पूजयित्वा च गोविन्दः स्मितं कृत्वाऽब्रवीद्वचः।

गोविन्द उवाच

कुत आगम्यतो ब्रह्मन् किमपूर्वं विलोकितम् ॥५७॥
पवित्रीकृतमस्माक भवनं मुनिसत्तम। पावितं नः कुलं सर्वं किमागमनकारणम् ॥५८॥
गोविन्दस्य वचः श्रुत्वा नारदो हृष्टमानसः। कृताञ्जलिपुटो भूत्वा वचनं चेदमब्रवीत् ॥५९॥

नारद उवाच

शृणु गोविन्द वक्ष्यामि यदर्थमहमागतः। हंसध्वजभयाद् भीतः सूर्यकेतुर्नराधिपः ॥६०॥
विहाय श्वेतकां शीघ्रं मृगेन्द्रशिखरं ययौ। चन्द्रावती तस्य कन्या प्रद्युम्नाय प्रकल्पिता ॥६१॥
तां याचते महाभीमो महेन्द्रदमनोऽसुरः। दैत्यस्य भगिनी दिव्या नाम्ना देवी प्रभावती ॥६२॥
तस्यै पतिः पुरा क्लृप्तः प्रद्युम्नो गिरिकन्यया। प्रद्युम्नः प्रेष्यतां तत्र महेन्द्रदमनोऽसुरः ॥६३॥
हन्तव्यस्तव पुत्रेण नात्र कार्या विचारणा। प्रद्युम्नः प्रेष्यतामत्र मया साकं सुरेश्वर ॥६४॥

प्रभावत्या विवाहश्च चन्द्रावत्यास्तथैव च। महेन्द्रदमनश्चैव हन्तव्यस्तव सूनुना ॥६५॥

श्रीकृष्ण उवाच

अहत्वा दुर्जयं दैत्यं चन्द्रावत्यास्तपोधन। कथं विवाहो भविता प्रद्युम्नेन सुतेन मे ॥६६॥

नारद उवाच

भूया गत्वा स हन्तव्यस्त्वया साकं मुनीश्वर। महेन्द्रदमनो दैत्यस्तव वध्यो न माधव ॥६७॥

श्रीकृष्ण उवाच

प्रद्युम्नस्यैव वध्योऽसौ ब्रह्मणो वदनाच्छ्रुतम्। कथं ब्रह्ममुखाद्विप्र श्रुतं तत् कथ्यतां मम ॥६८॥
महेन्द्रदमनो दैत्यः कस्य पुत्रश्च कीदृशः। कथं महेन्द्रो विजितस्तदाचक्ष्व पुरो मम ॥६९॥

नारद उवाच

वाणासुरो दैत्यराजः शोणिताख्ये पुरेऽभवत्। भार्या च रोहिणी तस्य पतिभक्तिपरायणा ॥७०॥
तस्यां पुत्रः समुत्पन्नः सर्वदेवभयावहः। तस्मिन् सञ्जातमात्रे तु प्रचचाल मही भृशम् ॥७१॥
वामं चक्षुः प्रास्फुरच्च सहस्राक्षस्य तत्क्षणात्। इन्द्रस्य दमनं यस्मात् करिष्यति महाबलः ॥७२॥
अतो महेन्द्रदमनो नाम चक्रे तु भार्गवः। सम्प्राप्तयौवनो दैत्यः शुक्रं पप्रच्छ भक्तितः ॥७३॥
शक्रो जेतुं कथं शक्यस्तदाचक्ष्व गुरो मम। श्रुत्वा तस्य वचः शुक्रः प्राह दानवपुङ्गवम् ॥७४॥

शुक्र उवाच

तपसा लभ्यते सिद्धिस्तपस्यां कुरु दानव। शक्रं जेष्यसि सङ्ग्रामे तपस्यायां सुदुर्जयम् ॥७५॥
गुरुपदेशमासाद्य महेन्द्रदमनोऽसुरः। रुद्रधारोदये तीर्थे चकार विमलं तपः ॥७६॥
सहस्रं शरदां तत्र वायुभक्षो जितेन्द्रियः। तपस्यया घोरया तु समाहृष्टो जगद्गुरुः ॥७७॥
विमानेनार्कवर्णेन प्रादुरासीच्चतुर्मुखः। पितामहं समालोक्य दण्डवत् प्रणिपत्य च ॥७८॥
महेन्द्रदमनो दैत्य इदं वचनमब्रवीत्। यदि तुष्टोऽसि देवेन्द्र वरं देहि ममेप्सितम् ॥७९॥
अजेयः सर्वदेवैश्च भविष्यामि सदा रणे। दैत्यस्य वचनं श्रुत्वा प्राह वाक्यं पितामहः ॥८०॥
यदीप्सितं मनसि ते तत् तथाऽस्त्विति दानव। इति तस्मै वरं दत्वा यथाभिलषितं प्रभुः ॥८१॥
विमानेनार्कवर्णेन ब्रह्मलोकं जगाम ह। ततो लब्धवरो दैत्यो वीरैर्दैत्यैः समन्वितः ॥८२॥
भार्गवेणाभिषिक्तस्तु दैत्यराज्ये रराज ह। सम्मन्त्र्य सचिवैः सार्धं महेन्द्रदमनोऽसुरः ॥८३॥
कूष्माण्डं प्रेषयामास दूतं देवेन्द्रसन्निधौ। ततो गत्वा शक्रसभां कूष्माण्डो घोरविक्रमः ॥८४॥
पुरन्दरं जगादेदं देवानां तत्र पश्यताम्। स्वयम्भुवा स्वामिनो मे राज्यं दत्तं पुरन्दर ॥८५॥
राज्यानि वीरभोग्यानि त्यक्तुं तस्मात् त्वमर्हसि। कूष्माण्डवचनं श्रुत्वा रोषाकुलितमानसः ॥८६॥
अब्रवीदुत्तरं वाक्यं सभायां बलसूदनः। राज्यानि वीरभोग्यानि सत्यमेव न संशयः ॥८७॥
राज्यं वीरा न त्यजन्ति विना युद्धेन दानव। बाणासुरसुतं ब्रूहि कूष्माण्ड वचनं मम ॥८८॥
यत् ते वीर्यं बलं तेजस्तद्दर्शय ममाग्रतः। इति शक्रवचः श्रुत्वा दूतः परमकोपनः ॥८९॥
आगत्य कथयामास दैत्याग्रे शक्रभाषितम्। दूतवाक्यं तदा श्रुत्वा महेन्द्रदमनोऽसुरः ॥९०॥
शङ्खासुरं पुरस्कृत्य भ्रातरं कच्छपानुजम्। दैत्यसैन्यं पुरस्कृत्य ययौ शक्रपुरीं शुभाम् ॥९१॥
उपरुध्येन्द्रनगरीं महेन्द्रदमनोऽसुरः। नन्दनाधिष्ठितो भूत्वा तस्थौ सङ्ग्रामकामुकः ॥९२॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये महेन्द्रदमनोपाख्यानं नामाष्टमोऽध्यायः ॥८॥

---

मार्कण्डेय भन्नुहुन्छ – यसै बीचमा महेन्द्रदमन नामको दैत्यले तपस्याद्वारा शिवको आराधना गरेर तीनै लोकमा दुर्जय भयो। लडाईमा जित्न नसकिने दैत्यले महेन्द्रसहित देवताहरूलाई जितेर तलतिर चन्दनशैल र उत्तरपट्टि सुप्रभासम्म फैलिएको विभिन्न रत्नहरूले युक्त र रमणीय शहर बनायो। महेन्द्रदमनकी बहिनी मृगको जस्तो आँखा भएकी प्रभावती नामकी थिइन्, ती जस्ती नारी त हुँदै हुँदैनन् ॥१–३५॥

देवताहरूले पूजिएकी वत्सलादेवीलाई तिनले आराधना गरिन्, खुसी भएकी हिमालयकी छोरी देवीले प्रभावतीलाई

भन्नुभयो– हे सुश्रोणि ! असल कम्मर वा नितम्ब भएकी तिम्रो मनमा लागेको वर माग । पर्वतबाट जन्मिएकी देवीको यस्तो वचन सुनेर देवीलाई प्रभावतीले हे देवि ! तपाईं नै प्राणीहरूको हृदयमा रहेको कुरा जान्नुहुन्छ भनिन् । प्रभावतीको बोली सुनेर तिनलाई पार्वतीले भन्नुभयो – तिम्रो चित्तमा रहेको कुरा मैले जानें, हे मृगनयनी ! कृष्णका छोरा प्रद्युम्न तिम्रा पति हुनेछन् । यति वर दिएर देवी तुरुन्तै अन्तर्धान हुनुभयो ॥४–८॥

वर पाएपछि प्रभावती सुप्रभा नगरीमा गइन् । चन्दनगिरिको टाकुरामा प्रभावतीलाई आनन्द दिलाउनका लागि नन्दनजस्तो राम्रो बगैंचा दानवले बनायो । मृगेन्द्रशिखरबाट बाहिर आएकी वाग्वतीलाई पर्वतजस्तो दानवले सेखी गरेर पर्वतैद्वारा रोक्यो । वाग्वती रोकिएपछि ठूलो श्लेष्मान्तक वन तलाउ भयो । सुप्रभामा बसेको दानव अत्यन्त खुसी भयो । सुप्रभामा स्वयं महेन्द्रदमन दैत्य रहेको थियो । मृगेन्द्रशिखरमा सूर्यकेतु राजा थिए । यसको बीचमा पानी–पानी भएको कमलहरूले सिँगारिएको तलाउजस्तो त्यो ठूलो श्लेष्मान्तक वन थियो । महेन्द्रदमन दैत्य जित्न नसकिने भन्ने देखेर र जानेर दिव्य रत्नहरू लिएर सूर्यकेतु राजा आफैंले सेवा गरे अनि निडर भएर बसे । त्यस दानवको कुनै दैत्य महेन्द्रशिखरमा गयो, त्यसले ती सूर्यकेतु राजाकी छोरीलाई देख्यो । भर्खरकी रम्भाभन्दा पनि राम्री, वनमा खेलेकी राजकन्यालाई देखेर चाँडै नै महेन्द्रदमनको अगाडि गएर विस्तारपूर्वक भन्न लाग्यो ॥९–१७॥

दानवले भन्यो– हे दैत्यराज ! मेरो कुरो सुन्नुहोस्, मृगेन्द्रशिखरमा, घुमिरहेकी ज्यादै राम्री, सूर्यकेतुकी छोरी मैले देखें । मानिसमा यस्ती राम्री त कहीं छैनन्, सूर्यकेतु राजाकी छोरी परम स्त्रीरत्न छन् । संसारमा रत्नको भोग गर्ने तपाईं नै हुनुहुन्छ । ती उत्तम स्त्री रत्न छन्, तिनको योग्य पति तपाईं नै हुनुहुन्छ, पृथ्वीतलमा अर्को कोही छैन । त्यसको यस्तो वचन सुनेर ज्यादै खुसी भएको महेन्द्रदमनले दृढ पराक्रम भएको त्यस दैत्यलाई भन्यो ॥१८–२२॥

महेन्द्रदमनले भन्यो– हे दनुजोत्तम ! मेरा अगाडि तिमीले ठीक कुरो भन्यौ । हे श्रेष्ठ दानव ! सूर्यकेतुले मलाई छोरी जसरी दिन्छन्, त्यस्तो काम तिमी गर । हे दानवसत्तम ! मृगेन्द्रशिखरमा गएर तिमी मेरा लागि सूर्यकेतु राजासँग कन्या माग । त्यसको आज्ञा पाएर त्यो दैत्य मृगेन्द्रशिखरमा गयो । त्यस दैत्यले सभामा मन्त्रीहरूले युक्त भएका राजालाई देख्यो ॥२३–२५॥

मन्त्रीहरूले दानवलाई देखेर बस्नुहोस् भने । तपाईं यहाँ किन आउनुभयो भन्ने राजाको बोली सुनेर दानवले भन्यो– बाणको छोरा र दैत्यहरूको राजा महेन्द्रदमन तपाईंको छोरी माग्नुहुन्छ, यी कन्या तपाईंले उहाँलाई दिनु मनासिब छ । शम्भुको प्रसादबाट महेन्द्रदमन रत्नभोग गर्ने हुनुहुन्छ, चन्द्रावती स्त्रीरत्न छन्, त्यसै कारण तपाईंले छोरी दिनु जायज छ । दूतको यस्तो बोली सुनेर डराएका सूर्यकेतु राजाले मन–मनमा विचार गरेर दूतलाई यसो भन्न लागे ॥२६–२९½॥

सूर्यकेतुले भने– तपाईंले जो भन्नुभयो, त्यो सब साँचो हो, यसमा कुनै शङ्का छैन । महेन्द्रदमन राजा तीनै लोकका अधिपति र समर्थवान् पनि हुनुहुन्छ, यदि उहाँ मेरी कन्या माग्नुहुन्छ भने मभन्दा बढी धन्य को होला र ? मेरी छोरी चन्द्रावती ज्यादै केटाकेटी छन्, जुन बेला मेरी छोरीको विवाह गर्ने समय होला, महेन्द्रदमनको आज्ञालाई मैले स्वीकार गर्नेछु, शङ्का मान्नुपर्दैन । राजाको यस्तो वचन सुनेर खुसी मन भएको दूतले महेन्द्रदमनकहाँ गएर सबै निवेदन गऱ्यो ॥३०–३३½॥

अनि दुःखी भएका सूर्यकेतु राजाले चिन्ता गरे – कष्टभन्दा पनि कष्ट पाएँ, यसपछि के गर्नुपर्ला ? श्वेतकाको परित्याग भयो, छोरी दैत्यले माग्छ, फेरि अब मृगेन्द्रशिखरमा पनि म बस्न सक्दिन । यसरी सूर्यकेतु राजा जब चिन्ताले आकुल भए, त्यसै बेला त्यहाँ मुनिसत्तम नारद आइपुगे । आएका नारदलाई देखेर सूर्यकेतु राजाले शास्त्रबमोजिम भक्तिपूर्वक पूजा गरे ॥३४–३७½॥

आसन जमाएका नारदलाई राजाले भने– महेन्द्रदमन दैत्य मेरी छोरी माग्छ, मृगेन्द्रशिखरमा रहेर कसरी दैत्यसँग विरोध गर्ने ? हे नारद ! मैले कसरी वैरी साध्ने होला ? राजाको यस्तो वचन सुनेर नारदले भने – राजाहरूमा श्रेष्ठ भएका हे सूर्यकेतु ! तपाईं डराउनु पर्दैन, तपाईंकी छोरी चन्द्रावती प्रद्युम्नलाई दिनुहोस् । म द्वारकामा गएर मधुसूदनको दर्शन गरी रुक्मिणीका छोरा प्रद्युम्न लाई यहाँ ल्याउँछु डर नमान्नुहोस् ॥३८–४२॥

नारदको बोली सुनेर सूर्यकेतु राजाले ती नारद मुनिलाई सधैं तपाईंले रक्षा गरिएको छु भने । राजालाई सल्लाह दिएर ती मुनि आकाशमार्गले गए । जाँदा ती मुनिले चन्दनागिरिको टाकुरामा बगैंचामा प्रभावती कन्यालाई देखे र प्रभावतीको नजिकमा नारद आए । सुन्दरी प्रभावतीले नारदलाई नमस्कार गरेर हे तपोधन ! तपाईं आउनाको कारण के हो भन्नुहोस् भनिन् ॥४३–४६॥

नारदले भने– एकातिर पहिल्यै देवीले तिमीलाई प्रद्युम्न तिम्रा पति हुनेछन् भनेर वर दिनुभयो, आजसम्म पनि कृष्णका छोरा प्रद्युम्नले तिमीलाई लाँदैनन् । अर्कोतिर ज्यादै राम्री सूर्यकेतुकी छोरी चन्द्रावती कृष्णको छोरा प्रद्युम्नलाई तयार पारिइन्, तर तिम्रो दाजु तिनलाई माग्दछन् । यसैले प्रद्युम्नलाई लिनका लागि द्वारकापुरी जान्छु, प्रद्युम्न आएपछि तिमीसँग पनि भेट हुनेछ ॥४७–४९॥

नारदको वचन सुनेर प्रभावतीले मुनिलाई भनिन् – तीनै काल जान्ने हे मुनीश्वर ! सबै तपाईं नै जान्नुहुन्छ, डरलाग्दो शङ्ख नामको महासुर खोंचमा छ, वाग्वतीको निकासको रक्षा गर्ने कच्छपासुर छ, मेरो दाजु पनि जित्नै नसकिने हुनुहुन्छ, प्रद्युम्न कसरी आउनुहोला र खै ? प्रभावतीको कुरा सुनेर नारदले तिनलाई फेरि भने ॥५०–५२॥

नारदले भने- हे मृगशावाक्षी ! तिमीले जे भन्यौ त्यो निश्चय साँचो हो, भामिनी ! सुप्रभामा नजानू, यहीँ बस्नू, तिम्रो दाजुको प्रतापले गर्दा यहाँ केही डर छैन। यति भनेर बुद्धिमान् नारद द्वारकापुरी गए, प्रभावती त्यहीँ चन्दनगिरिको टकुरोमा बसिन्। ती बुद्धिमान् नारद चाँडो द्वारकामा गएर यदुहरूले घेरिएको सभामा रहेका कृष्णलाई देखे। आएका नारदलाई देखेर विधिपूर्वक पूजा गरी मुस्कुराएर गोविन्दले भन्न लाग्नुभयो ॥५३-५६½॥

गोविन्द भन्नुहुन्छ - हे ब्रह्मन् ! कताबाट आउनुभयो ? के अनौठो देखियो ? हे मुनिसत्तम ! हाम्रो घर पवित्र गराइदिनुभयो, हाम्रो सबै कुल पवित्र भयो, आउनाको कारण के हो ? गोविन्दको वचन सुनेर हर्षित मन भएका नारदले हात जोरेर यस्ता वचन बोल्न लागे ॥५७-५९॥

नारदले भने - सुन्नुहोस्, गोविन्द ! जेका तिम्ति म आएँ, त्यो भन्छु। हंसध्वजको डरले डराएका सूर्यकेतु राजा श्वेतकालाई छोडेर तुरुन्तै मृगेन्द्रशिखरमा गए। तिनकी छोरी चन्द्रावती प्रद्युम्नलाई दिन अठोट गरिइन्, तर तिनलाई त्यो डरलाग्दो दैत्य महेन्द्रदमनले माग्छ। दैत्यकी बहिनी दिव्य ज्यादै राम्री प्रभावती देवी नामकी छन्, प्रद्युम्न तिनका पति हुन्छन् भनेर पार्वतीले पहिल्यै भन्नुभएको थियो। प्रद्युम्नलाई त्यहाँ पठाउनुहोस्। महेन्द्रदमन दैत्यलाई तपाईंको छोराले मार्नुपर्छ, यसमा विचार गर्नुपर्ने कुरा छैन। हे सुरेश्वर ! मसँग प्रद्युम्नलाई पठाउनुहोस्, प्रभावती र चन्द्रावतीको विवाह गर्नुपर्छ र महेन्द्रदमनलाई मार्नुपर्छ ॥६०-६५॥

श्रीकृष्णले भन्नुभयो - हे तपोधन ! दुर्जय दैत्यलाई नमारीकन मेरो छोरा प्रद्युम्नसँग चन्द्रावतीको विवाह कसरी होला ? हे मुनीश्वर ! तपाईंसँग म गएर त्यस दैत्यलाई मार्नुपर्छ ॥६६॥

नारदले भने- माधव ! महेन्द्रदमन दैत्य तपाईंबाट वध्य छैन (तपाईं मार्न सक्नुहुन्न), प्रद्युम्नद्वारा नै वध्य छ, यो ब्रह्माको मुखबाट सुनेको हुँ ॥६७॥

गोविन्दले भन्नुभयो - हे ब्राह्मण ! त्यो कसरी ब्रह्माजीको मुखबाट सुन्नुभयो ? भन्नुहोस्, महेन्द्रदमन दैत्य कसको छोरो हो र कस्तो छ ? कसरी महेन्द्रलाई जित्यो ? मलाई भन्नुहोस् ॥६८-६९॥

नारदले भने - शोणितपुरमा बाणासुर नामको दैत्यराज थिए, तिनकी पत्नी रोहिणी पतिव्रता थिइन्। तिनमा सबै देवतालाई डर गराउने छोरो भयो, त्यो जन्मँदा मात्र पनि ठूलो भुइँचालो गयो। उत्तिखेरै इन्द्रको देब्रे आँखो फर्फरायो। यस महाबलीले इन्द्रको दमन गर्नेछ भनेर शुक्रले महेन्द्रदमन नाम राखे। तन्नेरी भएको दैत्यले शुक्रलाई हे मेरा गुरु ! इन्द्रलाई जित्न कसरी सकिन्छ भन्नुहोस् भनेर सोध्यो। शुक्रले त्यसको वचन सुनेर दानवलाई भन्न लागे ॥७०-७४॥

शुक्रले भने - तपस्याले सिद्धि पाइन्छ, तपस्या गर। दानव ! लडाईंमा जित्न ज्यादै मुस्किल पर्ने इन्द्रलाई तपस्यामा जित्नेछौ ॥७५॥ महेन्द्रदमन दैत्यले गुरुको उपदेश पाएर रुद्रधारोदय तीर्थमा हजार वर्ष हावा खाएर र इन्द्रिय जितेर पवित्र तपस्या गर्‍यो। घोर तपस्याद्वारा खुसी भएका जगद्गुरु, चार मुख भएका ब्रह्माजी सूर्यको जस्तो वर्ण भएको विमानबाट प्रकट हुनुभयो। ब्रह्माजीलाई देखी दण्डवत् गरेर महेन्द्रदमन दैत्यले यो कुरा भन्यो - हे देवेन्द्र ब्रह्माजी ! यदि खुसी हुनुभएको छ भने मैले इच्छा गरेको वर दिनुहोस्, म सधैं लडाईंमा सबै देवताहरूले जित्न नसकिने होऊँ ।७५-७९½॥

दैत्यको वचन सुनेर ब्रह्माजीले भन्नुभयो - तिम्रो मनमा जस्तो चाहना छ, त्यस्तै होस्। त्यसलाई यस्तो चाहेजस्तो वर दिएर ब्रह्माजी सूर्यको जस्तो वर्ण भएको विमानद्वारा ब्रह्मलोक जानुभयो। त्यसपछि वर पाएको दैत्य शुक्रले अभिषेक गरिएको छँदा वीर दैत्यहरूका साथ दैत्यको राज्यमा राज्य गर्न थाल्यो। महेन्द्रदमन दैत्यले मन्त्रीहरूसँग छलफल गरेर इन्द्रको नजिकमा कूष्माण्ड नामको दूत पठायो ॥८०-८३½॥

त्यसपछि भयङ्कर पराक्रम भएको कूष्माण्डले इन्द्रको सभामा गएर देवताहरूको समक्ष इन्द्रलाई यस्तो भन्यो- हे इन्द्र ! ब्रह्माजीले मेरा स्वामीलाई राज्य दिनुभयो, राज्य त वीरले भोग गर्ने हुन्छ, त्यस कारण तपाईंले राज्य छोड्नु वेश होला ॥८४-८५½॥

कूष्माण्डको कुरा सुनेर रीसले भकभकाएका इन्द्रले सभामा यस्तो जवाफ दिए - राज्यहरू वीरले नै भोग गर्छन्, यो साँचो नै हो, कुनै सन्देह छैन। हे दानव ! वीरहरू युद्धविना राज्य छोड्दैनन् पनि, कूष्माण्ड, तिम्रो जे पराक्रम, बल, तेज छ त्यो मेरा सामु देखाऊ भनेर मेरा कुरा बाणासुरको छोरालाई भनिदेऊ ॥८६-८८½॥

इन्द्रको यस्तो बोली सुनेर सारै रिसाएको दूत आएर दैत्यका अगाडि इन्द्रको भनाई बिन्ती गर्‍यो। दूतको कुरा सुनेर महेन्द्रदमन दैत्य शङ्खासुर भाई कच्छपासुर र दैत्यसैन्यलाई अगाडि लाएर अमरावतीतिर गयो। लड्न चाहने महेन्द्रदमन दैत्य इन्द्रको शहर रोकी नन्दनमा अखडा जमाई अड्यो ॥८९-९२॥

स्कन्दपुराण अन्तर्गत हिमवत्खण्डको नेपाल माहात्म्यमा महेन्द्रदमनको कथावर्णनमा आधारित आठौं अध्याय पूर्ण भयो।

# अथ नवमोऽध्यायः

देवदानवयुद्धं नारदप्रभावतीसंवादश्च

(देवासुरसङ्ग्राम र नारद तथा प्रभावतीको संवाद)

नारद उवाच

नन्दनाधिष्ठितं दृष्ट्वा महेन्द्रदमनासुरम्। देवसैन्यं पुरस्कृत्य निर्ययौ बलसूदनः ॥१॥
रथदुन्दुभिनिर्घोषैर्हयानां ह्रेषितैस्तथा। गजानां बृंहितैश्चापि न चाश्रूयत किञ्चन ॥२॥
नानादातिशयं शङ्खः स्वरेण महता तदा। पपात शरवृष्टिश्च सेनयोरुभयोरपि ॥३॥
तदा दैत्यबलैर्भग्नं देवसैन्यं दुरात्मभिः। पलायिते देवसैन्ये आजगाम पुरन्दरः ॥४॥
महता शरवर्षेण छादयामास दानवान्। दानवानां च केषांचिच्चिच्छेद चरणद्वयम् ॥५॥
केषांचित् पातयामास शिरांसि निशितैः शरैः। प्रभग्नां वाहिनीं दृष्ट्वा स्वरेण महता नदन् ॥६॥
अभ्ययादतिसङ्क्रुद्धः शङ्खो दानवपुङ्गवः। पुरन्दरस्य शङ्खेन युद्धमासीत् सुदारुणः ॥७॥
कृते प्रतिकृतिं कुर्वन् शङ्खः परमदारुणः। विव्याध सप्तभिर्बाणैः शक्रस्य हृदयं दृढैः ॥८॥
विद्धोऽपि बलभित् क्रुद्धो दर्शयन् हस्तलाघवम्। चतुर्भिश्चतुरो वाहान् शरेणैकेन सारथिम् ॥९॥
विव्याध हृदयं तस्य दशभिर्मर्मभेदिभिः। शङ्खं च विकलं दृष्ट्वा महेन्द्रदमनो रुषा ॥१०॥
चूर्णयामास समरे रथं शक्रस्य सुन्दरम्। रथान्निपतितं शक्रं यावद् गृह्णाति दानवः ॥११॥
तावत् तस्य भयत्रस्तो मुक्तकेशोऽमराधिपः। उत्पपात नभस्तूर्णं परित्यज्य रणस्थलीम् ॥१२॥
महेन्द्रदमनो दैत्यः प्रविवेशामरावतीम्। क्षणेन तत्र सम्प्राप्तो विमानेन चतुर्मुखम् ॥१३॥
रणे विजयिनं दृष्ट्वा दैत्येन्द्रमिदमब्रवीत्।

ब्रह्मोवाच

पुरन्दर पुरे धीर न स्थातव्यं ममाज्ञया ॥१४॥
कीर्त्तिश्च परमा लब्धा नाम सत्यं त्वया कृतम्। सुप्रभायां त्वया स्थेयं दानवैः समरोद्धतैः ॥१५॥
त्रैलोक्ये यानि रत्नानि वीरभोग्यानि दानव। सुप्रभायां गमिष्यन्ति सर्वाणि मम शासनात् ॥१६॥
इति ब्रह्मवचः श्रुत्वा महेन्द्रदमनस्तदा। सुप्रभां नगरीं रम्यां प्रययौ दानवैर्वृतः ॥१७॥
रणत्रस्तं सुरेन्द्रं च ब्रह्मा वचनमब्रवीत्। प्रादुर्भूते शचीनाथ मथुरायां मधुद्विषि ॥१८॥
प्रद्युम्नस्तनयस्तस्य भविष्यति मनोरथः। महेन्द्रदमनं हन्ता कामो दग्धो हरेण यः ॥१९॥
गौतमस्य वधूर्भुक्ता त्वया कपटरूपिणा। अतः पुरा कृतं कर्म त्वया भुक्तं पुरन्दर ॥२०॥
पराजयः शत्रुहस्तान् मरणादतिरिच्यते। अतः सन्त्यज्यतां शक्र वैराग्यं मदनुज्ञया ॥२१॥
आश्वस्तो ब्रह्मणा शक्रः प्रविवेशामरावतीम्।

नारद उवाच

अत एव हि गोविन्द महेन्द्रदमनोऽसुरः ॥२२॥
प्रद्युम्नेनैव हन्तव्यो दारुणोऽपि न संशयः। प्रद्युम्नोऽपि मया साकमतो गच्छतु सुप्रभाम् ॥२३॥
प्रातस्त्वयाऽपि गोविन्द समागन्तव्यमेव हि।

मार्कण्डेय उवाच

इति नारदवाक्यान्ते प्रद्युम्नं मधुसूदनः ॥२४॥
सुप्रभां प्रेषयामास नारदेन समं तदा। आरुह्य गरुडं शीघ्रं प्रद्युम्नः प्राप तत्क्षणात् ॥२५॥
चन्दनाशैलशिखरं यत्रास्ते हि प्रभावती। सर्वर्त्तुकुसुमाकीर्णे नानावृक्षमनोहरे ॥२६॥
विचित्रमण्डपे खट्वासुप्ता देवी प्रभावती। आविलोक्य शरज्ज्योत्स्नां हृदयेन विदूयता ॥२७॥
सञ्चिन्तयन्ती प्रद्युम्नं गिरिजावरदानतः। शशाङ्कं निन्दयामास कामबाणप्रपीडिता ॥२८॥

प्रभावत्युवाच

जन्म क्षीरपयोनिधौ निवसतिः शम्भोः सदा मस्तके। पीयूषाम्बुधितां गतः क्रतुभुजां शैत्यं स्वभावस्तव।
भूत्वा चण्डकरो निहंसि कुपितो बालामनाथां भृशम्। नो जानामि कलानिधान भवता किं कारणं कथ्यताम् ॥२९॥
चकोरनेत्रसुखद चन्द्र चन्दनशीतल। जगदाह्लादको भूत्वा मां हंसि कृपणां कथम् ॥३०॥
मम कान्तमुखेन त्वं जितोऽसि शशलाञ्छन। अतस्तस्य प्रियां हंसि करैरतिसुदुस्सहैः ॥३१॥
शशाङ्क क्षीणतामेषि वियोगिजनपीडनात्। तथाऽपि जायते चित्ते न घृणा ते वधूवधे ॥३२॥
कृतान्ततुल्यः शशलाञ्छन त्वं करोमि किं वा सविधे न कान्तः।
प्राणापहर्त्ता मदनो दुरन्तः सत्यं भविष्यत्यचिरान्मदन्तः ॥३३॥
कुसुमानि दहन्ति मानसं विपरीतः पवनोऽपि दक्षिणः। भ्रमतामलिनां हि सुस्वरैर्बधिरे मे श्रवणे कृते भृशम् ॥३४॥
कोकिलाकलरवेन मानसं जायते हि भृशमाकुलं मम।
पार्श्वमेषि न हि माधवात्मजः किं करोमि मदनः सुदारुणः ॥३५॥
शिरीषसुकुमाराङ्गी बालाऽहं नययौवना। चाण्डालादधिकश्चण्डो धनुःपाणिर्मनोभवः ॥३६॥
वरो दत्तो गिरिजया प्रद्युम्नो दयितस्तव। नाद्यापि स समायाति किं कर्त्तव्यमतः परम् ॥३७॥
इत्थं बहुविधैर्वाक्यैर्यावच्चन्द्रं विनिन्दति। तावदाकाशमार्गेण प्रद्युम्नो मुनिना सह ॥३८॥
ददृशे च तयाऽत्यन्तभीतया मुनिसत्तम। किमयं भास्करो देवः किमुताग्निः समागतः ॥३९॥
एवं प्रभावती यावन्निरूपयतिः सत्त्वरम्। तावत् प्रद्युम्नसहितो नारदः पुरतः स्थितः ॥४०॥
वीणापाणिं मुनिं दृष्ट्वा प्रद्युम्नसहितं स्वयम्। उत्थाय प्रणतिं चक्रे तदा देवी प्रभावती ॥४१॥

नारद उवाच

तावत् प्रभावतीं प्राह नारदो मुनिसत्तमः। अयं ते पतिरायातः प्रभावति हरेः सुतः ॥४२॥
यो निर्दिष्टो गिरिजया सौन्दर्यालयतां गतः। गान्धर्वेण विवाहेन भजस्वामुं हरेः सुतम् ॥४३॥
पूर्णो मनोरथो चास्तु तवाद्य हरिणेक्षणे।

मार्कण्डेय उवाच

जैमिने नारदवचः श्रुत्वा देवी प्रभावती ॥४४॥
कृताञ्जलिपुटा भूत्वा भूयः प्रोवाच नारदम्।

प्रभावत्युवाच

मुने प्रज्ञप्तुमिच्छामि श्रूयतां मुनिसत्तम ॥४५॥
महेन्द्रदमनो भ्राता ममास्ति बलवान् प्रभुः। वासवो येन समरे विजितः स्वेन तेजसा ॥४६॥
अयं च सुकुमाराङ्गः सम्यगप्राप्तयौवनः। यदि जानाति दैत्येन्द्रः कथं स्वस्ति भविष्यति ॥४७॥
श्रुत्वा प्रभावतीवाक्यं पुनः प्रोवाच तां मुनिः। श्रूयतां मृगशावाक्षि हितं यत् ते वदाम्यहम् ॥४८॥

नारद उवाच

महेन्द्रदमनाद् भ्रातुर्मा भयं कुरु भामिनि। अनेन निहतः सङ्ख्ये दुर्जेयः कालशम्बरः ॥४९॥
महेन्द्रदमनं दैत्यमयमेव हनिष्यति। देवि प्रभाते विमले महद्युद्धं भविष्यति ॥५०॥
आगमिष्यति ते देवि श्वशुरो गरुडासनः। प्रद्युम्नस्य सहायार्थं श्वः प्रभाते न संशयः ॥५१॥
हत्वा महेन्द्रदमनं दुर्जयं देवकण्टकम्। चन्द्रावत्या विवाहोऽपि कर्त्तव्योऽनेन भामिनि ॥५२॥
द्वारवत्यां त्वया गत्वा पत्याऽनेन मृगेक्षणे। भोक्तव्या विविधा भोगा देवैरपि सुदुर्लभाः ॥५३॥

प्रभावत्युवाच

इति नारदवाक्यान्ते पुनः प्राह प्रभावती। पत्याऽनेन मम भ्राता हन्तव्यो यदि नारद ॥५४॥
जीवनेन सुखेनापि न कार्यं विद्यते मम। अकीर्त्तिः सर्वलोकेषु भविष्यति न संशयः ॥५५॥
प्रभावत्या हि पत्यर्थे स्वभ्राता विनिपातितः। अतो नारद नेच्छामि प्रद्युम्नं स्वगृहं मुने।
इति वाक्यं तदा श्रुत्वा पुनः प्रोवाच नारदः ॥५६॥
अकीर्तितः परं भीत्वा यात्वयं स्वगृहं मुने। इति वाक्यं तदा श्रुत्वा पुनः प्रोवाच नारदः ॥५७॥

नारद उवाच –

अस्मिन्नर्थे मा विषादस्तवास्तु वरवर्णिनि । पितुःकुलाधिकं कान्तमिच्छन्ति च वरस्त्रियः ॥५८॥
भवितव्यं भवत्येव प्रयासस्तु निरर्थकः । अत एवं न शोचन्ति पण्डिता मृगलोचने ॥५९॥
इदं विधात्रा रचितं श्रूयतां वरवर्णिनि । प्रद्युम्नस्ते पतिर्भावी सत्यं पङ्कजलोचने ॥६०॥
महेन्द्रदमनो दैत्यो हन्तव्योऽनेन सर्वथा । इति ज्ञात्वा वरारोहे विषादं मुञ्च भामिनि ॥६१॥
मृगेन्द्रशिखरं यामि प्रातरेष्यामि तेऽन्तिके । इत्युक्त्वा नारदमुनिर्मृगेन्द्रशिखरं ययौ ॥६२॥

मार्कण्डेय उवाच –

गत्वा तत् कथयामास सूर्यकेतोः प्रभोः पुरः । गते मुनिवरे देवी प्रद्युम्नाय स्वमासनम् ॥६३॥
ददौ च लज्जिता भूत्वा न हि प्रोवाच किञ्चन । त्रपानतमुखीं देवीं प्रद्युम्नः प्राह सादरम् ॥६४॥
त्वद्रूपसम्पदं श्रुत्वा नारदस्य मुखान्मया । लब्धा निद्रा मया नैव सदा त्वद्गतचेतसा ॥६५॥
इत्यादिविविधं वाक्यमुक्त्वा माधवबालकः । उपयेमे विवाहेन गान्धर्वेण प्रभावतीम् ॥६६॥
ततोऽङ्कमध्यमारोप्य राजपुत्रीं प्रभावतीम् । प्रद्युम्नो रूपिणां श्रेष्ठ इदं वचनमब्रवीत् ॥६७॥
कान्तिमान् नयनानन्दजननो जनमोहनः । प्रयाति पश्य पूर्णेन्दुस्त्वद्वक्रस्योपमां प्रिये ॥६८॥
सङ्कुचत्यब्जनिकरं विहाय कमलोत्पलम् । प्रयाति मधुलिट् कोऽपि विकसत्कुमुदोदरम् ॥६९॥
भृङ्गराजभराक्रान्तकेशरं कुमुदं प्रिये । पीताधरमिवाभाति रत्यन्ते कामिनीमुखम् ॥७०॥
मन्दमारुतविक्षिप्तैः प्रचलद्भिः सुकोमलैः । पल्लवाञ्जलिभिः पुष्पं क्षिपन्ति तरवः प्रिये ॥७१॥
स्मितपुष्पोद्गममयं रुचिराधरपल्लवम् । भ्रूलतानृत्यबहुलमुद्यानमिव त्वन्मुखम् ॥७२॥
इत्युक्त्वा प्रियवाक्येन प्रियां प्रेमप्रवर्त्तकः । रेमे स रुक्मिणीसूनू रम्ये गिरिवरे तदा ॥७३॥
ततः स्फुरत्पद्मपरागपिञ्जरा तरङ्गमालारुचिरा कलावृता ।
प्रभावती हंसकलप्रतापिनी सरोरुहिण्या उपमानतां ययौ ॥७४॥

॥ इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये नवमोऽध्यायः ॥९॥

---

नारदले भने – नन्दनमा अकडिएर रहेको महेन्द्रदमन दैत्यलाई देखेर देवसेनालाई अगाडि लगाई इन्द्र निस्के । रथ र कर्नालका शब्दहरूले, घोडाका हिनहिनाइले, हात्तीका कराइले केही पनि सुनिएन । शङ्ख ठूलो स्वरले बज्यो र दुवै सेना उपर बाणवृष्टि भयो । त्यस बेला दुरात्मा दैत्यका सेनाले देवताहरूको सैन्य छिन्न भिन्न पारे । देवताका सेना भागेपछि इन्द्र आए र धेरै बाणको वर्षाले दानवहरूलाई ढाकिदिए । कति दानवहरूका दुवै खुट्टा काटि दिए, कसैका काउकाहरू तीखा बाणहरूले भुईंमा खसालिदिए । छिन्नभिन्न भएको सेना देखेर ठूलो स्वरले गर्जदै ज्यादै रिसाएको अजङको दानव शङ्ख दौडेर आयो । शङ्खका साथ इन्द्रको भयङ्कर युद्ध भयो । क्रियाको प्रतिक्रिया गर्दै भयङ्कर शङ्खले बलिया सातवटा बाणद्वारा इन्द्रको छाती छेड्यो ॥१–८॥

रिसाएका इन्द्रले चोट लागे पनि हस्तकौशल देखाउँदै चारवटा बाणले चारवटा घोडालाई र एउटा बाणले सारथिलाई मर्म छेड्ने दशोटा बाणले त्यसको छाती छेडे । शङ्खलाई विकल देखेर महेन्द्रदमनले रिसाउँदै युद्धमा इन्द्रको सुन्दर रथ धूलो धूलो पारिदियो । रथबाट खसेका इन्द्रलाई दानवले जब समात्यो, त्यसको डरले आत्तिएका, कपाल फुकेका इन्द्र तुरुन्तै रणमैदान छोडेर आकाशमा उफ्रिए । महेन्द्रदमन दैत्य अमरावतीमा पस्यो । उत्तिखेरै विमानद्वारा ब्रह्माजी त्यहाँ आइपुग्नुभयो र युद्धमा विजयी भएको दैत्येन्द्रलाई भन्न लाग्नुभयो ॥९–१३½॥

ब्रह्माले भन्नुभयो – हे धीर ! मेरो आज्ञाले तिमी यस इन्द्रको शहरमा नवम ठूलो कीर्ति पायौ, तिमीले आफ्नो नाम सत्य बनायौ, युद्धमा तत्पर दानवहरूसँगै तिमी सुप्रभामा बस हे दानव तीनै लोकमा वीरहरूले भोग गर्ने जो रत्नहरू छन्, मेरो आज्ञाले सबै सुप्रभामा जानेछन् ॥१६॥ यस्तो ब्रह्माजीको वचन सुनेर अनि दानवहरूले घेरिएको महेन्द्रदमन राम्रो सुप्रभा नगरीमा गयो ॥१४–१७॥

लडाईंले डराएका इन्द्रलाई ब्रह्माजीले फेरि भन्नुभयो – हे शचीका स्वामी ! मथुरामा मधुका शत्रु जन्मेपछि तिनको मनमाफिकको छोरो हुनेछ र महेन्द्रदमनलाई मार्नेछ, जो शिवले डढाइएका कामदेव हुन् । छलेर तिमीले गौतमकी दुलही भोग गर्‍यौ, यसै कारण हे इन्द्र ! तिमीले पहिल्यै गरेको काम भोग्यौ । शत्रुको हातबाट पराजय मर्नुभन्दा पनि बढी हो । हे इन्द्र ! मेरो

कुरा खाएर विरक्ति छोड। ब्रह्माजीले यसरी सम्झाएपछि इन्द्र अमरावतीमा पसे ॥१८-२१½॥

नारदले भने – यसै कारणले नै हे गोविन्द ! डरलाग्दो शत्रु भए पनि निश्चय नै महेन्द्रदमन दैत्यलाई प्रद्युम्नले मार्नुपर्छ। यसैले प्रद्युम्न पनि मसँग सुप्रभामा जाऊन्, गोविन्द ! बिहान तपाईं पनि आउनुपर्छ नै ॥२२-२३½॥

मार्कण्डेयले भन्नुभयो – यति नारदले भनेपछि नारदका साथ मधुसूदनले प्रद्युम्नलाई सुप्रभामा पठाउनुभयो। चाँडै नै गरुड चढेर जहाँ चन्दना पर्वतको शिखरमा प्रभावती थिइन्, त्यहाँ तुरुन्तै प्रद्युम्न पुगे। सबै ऋतुमा हुने फूलले ढाकिएको, विभिन्न रुखहरूले मनोहर भएको अनौठो मण्डपमा रहेको पलङमा सुतेकी, खिन्न हृदयले शरद्कालीन चन्द्रमाको उज्यालोलाई हेरेर पार्वतीको वरदानबाट प्रद्युम्नलाई सम्झँदा कामबाणले पीडा गरिएकी देवी प्रभावतीले चन्द्रमाको निन्दा गरिन् ॥२२-२८॥

प्रभावतीले भनिन् – क्षीरसमुद्रको जन्म हो, सधैं शम्भुको शिरमा वास छ, देवताहरूका निमित्त अमृतसागरका रूपमा रहेका तिम्रो स्वभाव ज्यादै शीतल छ, रिसाएका तिमी ताता किरण भएको भई अनाथ बालालाई ज्यादै दुःख दिन्छौ। हे कलानिधान ! तिमीले के कारणले मलाई यस्तो गरेको हो ? मलाई थाहा छैन, भन। हे च्याखुराका आँखालाई आनन्द दिने ! हे चन्दन जस्ता शीतल चन्द्र ! संसारलाई आनन्द गर्ने भएर पनि किन असहाय मलाई दुःख दिन्छौ ?। हे शशाङ्क ! मेरा प्याराको मुखले तिमी जितिएका छौ, यसै कारणले सहन नसकिने किरणले तिनकी प्यारीलाई मार्छौ ? हे शशाङ्क ! वियोगी जनलाई पिर्नाले खिईंदै जान्छौ, तैपनि वधूलाई दुःख दिने तिम्रो चित्तमा घृणा उम्रँदैन। हे चन्द्रमा ! तिमी यमराजसमान छौ। म के गरुँ ? मेरो सामु तिमी सुन्दर पनि छैनौ। प्राण हर्ने कामदेवको पनि अन्त नहुने भयो। साँच्चै छिटै नै मेरो अन्त हुनेछ। फूलहरू मनलाई भसक्क पार्छन्, दक्षिणानिल पनि पोल्ने हुन्छ, घुम्ने भमराका हुनहुनले पनि मेरा कान औधी बहिरा भइसके। कोइलीको कलरवले मेरो मन ज्यादै आकुल हुन्छ। माधवात्मज नजिक आउँदैनौ कामदेव कठोर छ, म के गरुँ। शिरीष जस्तो कोमल अङ्ग भएकी भर्खरकी म छु, हातमा धनु भएको मनोभव चण्डालभन्दा पनि बढी कठोर छ। प्रद्युम्न तिम्रा प्रिय हुन् भनेर पार्वतीले वर दिइन्, अहिलेसम्म पनि उनी आउँदैनन्, अब के गर्ने होला ? ॥२९-३७॥

हे मुनिसत्तम ! यस्तै अनेक किसिमका कुराले जब चन्द्रमालाई प्रभावतीले निन्दा गरेको समयमा आकाशमार्गद्वारा आएका मुनिसहितका प्रद्युम्नलाई देखेर अत्यन्त डराएकी तिनले देखिन् अनि यी सूर्यदेव हुन् कि ? अथवा अग्नि पो आए कि भनेर जब प्रभावतीले निहालेकी मात्रै थिइन्, त्यसै समयमा प्रद्युम्नका साथ नारद अगाडि आइहाले। प्रद्युम्नसहित वीणा हातमा लिएका मुनिलाई देखेर देवी प्रभावतीले आफैं उठेर अभिवादन गरिन्। त्यसपछि श्रेष्ठ मुनि नारदले प्रभावतीलाई सम्झाउन लागे ॥३८-४१॥

नारदले भने- प्रभावती हरिका छोरा यिनी तिम्रा पति आए, सौन्दर्यका घर भएका यिनलाई पार्वतीले औंल्याएकी थिइन्। गान्धर्व विवाहद्वारा यी हरिका छोरालाई पति बनाऊ। हे मृगको जस्तो आँखा भएकी ! आज तिम्रो मनोरथ पूर्ण होओस् ॥४२-४३½॥

मार्कण्डेयले भन्नुभयो – हे जैमिनि ! नारदको वचन सुनेर देवी प्रभावतीले हात जोरेर फेरि नारदलाई भनिन् ॥४४½॥

प्रभावतीले भनिन् – हे मुनि ! बिन्ती गर्न चाहन्छु, सुन्नुहोस्। हे असल मुनि ! जसले लडाईंमा आफ्ना तेजले इन्द्रलाई पनि जित्नुभयो, त्यस्ता बलवान् संरक्षक मेरा दाजु महेन्द्रदमन हुनुहुन्छ। यहाँ राम्ररी यौवनमा पुग्नु नै नभएका, कलिलो अङ्ग भएका हुनुहुन्छ, यदि दैत्येन्द्रले थाहा पाए कसरी कल्याण होला ?। प्रभावतीको कुरा सुनेर फेरि मुनिले तिनलाई सम्बोधन गर्दै 'हे मृगशावाक्षी ! तिमीलाई म कल्याणकारक कुरा भन्छु, सुन' भनी बोल्न लागे ॥४५-४८॥

नारदले भने – दाजु महेन्द्रमनदेखि डर नगर, भामिनी ! यिनैले दुर्जय कालशम्बरलाई युद्धमा मारेका थिए ॥४९॥ महेन्द्रमन दैत्यलाई यिनले नै मार्नेछन्, हे देवी ! निर्मल प्रभातमा ठूलो युद्ध हुनेछ ॥५०॥ हे देवी ! तिम्रा ससुरा गरुड वाहन भएका प्रद्युम्नको सहायताका लागि भोलि बिहान निश्चय आउनु हुनेछ ॥५१॥ जित्न मुश्किल पर्ने देवताहरूको शत्रु महेन्द्रमनलाई मारेर चन्द्रावतीको विवाह पनि यिनैसँग गर्नुपर्छ, भामिनी ! ॥५२॥ हे मृगेक्षणा ! यी पतिसँग द्वारवतीमा गएर तिमीले देवताहरूले पनि पाउन कठिन पर्ने अनेक किसिमका भोगहरूको उपभोग गर्नुपर्छ ॥५३॥ नारदले यस्तो भनेपछि प्रभावतीले फेरि बिन्ती गरिन् ॥४९-५३½॥

प्रभावतीले भनिन् – हे नारद ! यदि यहाँ पतिले मेरो दाजु मार्नुपर्छ भने मेरो सुखी जीवनको पनि केही काम छैन। प्रभावतीले लोग्नेका लागि आफ्नो दाजुलाई पनि मारी भन्ने अपयश जताततै फैलन्छ। अपयशको ठूलो डरले गर्दा हे मुनि नारद ! उत्तम प्रद्युम्न जस्तालाई पति बनाउन सक्तिनँ, वहाँ आफ्नै घर फर्कनुभए हुन्छ। यस्तो कुरो सुनेर नारदले फेरि उनलाई सम्झाए ॥५४-५७॥

नारदले भने – हे सुन्दरी ! यसका लागि तिमीले खेद नगर, उत्तम स्त्रीहरूले बाबुको कुलभन्दा पतिलाई चाहन्छन्। हुने कुरो भइहाल्छ,, मेहनत बेकार हो। यसैले हे मृगलोचना ! पण्डितहरू यस्तो कुरोलाई सोच्दै सोच्दैनन् ॥५९॥ हे सुन्दरी !

सुन, यो त विधिले रचना गरेको हो, हे पङ्कजलोचना ! निश्चय नै तिम्रा पति प्रद्युम्न नै हुनेछन् ॥६०॥ हे भामिनी ! महेन्द्रमन दैत्यलाई यिनले जसरी पनि मार्नै पर्छ, यस्तो सम्फेर वर रोज्नमा खेद नगर, म अहिले मृगेन्द्रशिखरमा जान्छु, तिमी भएको ठाउँमा बिहान आउनेछु ॥५८-६२॥

मार्कण्डेयले भन्नुभयो – यति भनेर नारदमुनि मृगेन्द्रशिखरमा गए। त्यसपछि उनले त्यहाँ सूर्यकेतु राजालाई ती सबै कुरा भने। मुनिवर गएपछि देवीले प्रद्युम्नलाई आफ्नो आसन दिइन्, लजालु भएर केही पनि बोलिनन्। लाजले घोसेमुन्टो गरेकी देवीलाई आदरपूर्वक प्रद्युम्नले भने – नारदको मुखबाट तिम्रो रूपसम्पत्ति सुनेर सधैँ तिमीमा चित्त लागेकोले मैले निद्रा नै पाइनँ, इत्यादि अनेक कुरा भनेर माधवका छोराले गान्धर्व विवाहद्वारा प्रभावतीलाई विवाह गरे ॥६३-६६॥

त्यसपछि राजपुत्री प्रभावतीलाई काखमा राखेर राम्राहरूमा पनि राम्रा प्रद्युम्नले यो कुरा भने – हे प्यारी ! उज्याला आँखालाई आनन्द दिने, मानिसलाई लट्ठ पार्ने पूर्ण चन्द्रमा हेर त तिम्रो मुखको उपमा हुन पुगेको छ। कमलहरू बैलाए, कमललाई छोडेर कुनै भमरा फुलेको कुमुदतिर जान्छ। प्यारी भमराहरूले केशर अँठ्याइएको कुमुद रतिको अन्त्यमा ओठ चुसिएकी कामिनीको मुख जस्तो लाग्दछ। मन्द हावाले छरिएका चञ्चल र कोमल पालुवाका अञ्जलिले रुखहरू फूल छरिरहेका छन्। हे प्रिये ! अलि अलि हाँसेको फूल निस्के जस्तो राम्रा पालुवा जस्तो ओठ भएको, पृथ्वीका लहराका नाचहरू भएको बगैँचा जस्तो तिम्रो मुख छ। यस्ता प्यारा कुरा प्रियालाई भनेर प्रेमप्रवर्त्तक ती रुक्मिणीका छोराले त्यस बेला त्यो राम्रो पर्वतमा प्रभावतीका साथ रमण गरे। अनि फुलेका कमलका परागले पहेँलो भएको, अनेक तरङ्गहरू भएको हाँसको शब्दले ढाकिएको तलाउ जस्तै प्रभावती भइन् ॥६७-७४॥

स्कन्दपुराण अन्तर्गत हिमवतखण्डमा नेपालमाहात्म्यको नवौँ अध्याय पूर्ण भयो ॥९॥

# अथ दशमोऽध्यायः

नारदप्रद्युम्नसंवादः(नारद र प्रद्युम्नका बीच संवाद)

मार्कण्डेय उवाच

वारुणीदिशमापन्ने शशाङ्के फेनसन्निभे। सम्प्राप्तं नारदं दृष्ट्वा प्रद्युम्नो वाक्यमब्रवीत् ॥१॥
कथं जेयः स देवर्षे दानवेन्द्रः सुदुर्जयः। सुव्यक्तं बालभावेन स्वल्पवीर्येण वै मया ॥२॥
तस्य तद्वचनं श्रुत्वा प्रद्युम्नस्य महात्मनः। अब्रवीदीदृशं वाक्यं भगवान् नारदो मुनिः ॥३॥
जेष्यसि त्वं महाबाहो दानवेन्द्रं सुदुर्जयम् ॥४॥
ब्रह्मणो वचनादेव दैत्येन्द्रेण दुरात्मना। जितं लोकत्रयं तेन लोकपालाभिरक्षितम् ॥५॥
ततः प्रहृष्टहृदयो हर्षाद्रोमाञ्चितः प्रियाम्। अब्रवीदीदृशं वाक्यं श्रीमान् मकरकेतनः ॥६॥
महर्षेर्वचनं चैतच्छ्रुतं ते कमलानने। क्रियतां मङ्गलं देवि जयार्थं मम सर्वथा ॥७॥
ततः प्रभावती देवी वाष्पपूर्णविलोचना। मङ्गलं रचयामास पत्युर्जयविधायिनी ॥८॥
मङ्गलं रचितं देव्या दृष्ट्वा मकरकेतनम्। अब्रवीद्धृष्टहृदयो नारदो मुनिसत्तमः ॥९॥
त्वत्पिता भगवान् विष्णुः शङ्खचक्रगदाधरः। अद्य त्वद्विजयं द्रष्टुं गरुडेनागमिष्यति ॥१०॥
तवैव विजयं द्रष्टुं प्रहृष्टस्त्रिदशैः सह। आगमिष्यति भो वत्स भगवान् पाकशासनः ॥११॥
शङ्खो नाम दुराधर्षः शङ्खदुन्दुभिनिःस्वनः। सेतुं संरक्ष्य यत्नेन वर्तते देवकण्टकः ॥१२॥
बलात् पादेन सम्पीड्य जयार्थेनात्मनस्त्वया। पूरणीयो दुराचारो यथा जायेत वै स्वनः ॥१३॥
तस्य नादेन घोरेण वज्रनिर्ह्रादवर्चसा। भविष्यति महात्रासो दानवानां दुरात्मनाम् ॥१४॥
हत्वा दैत्यं दुरात्मानं सानुजं बलदर्पितम्। पूरणीयस्त्वया पुत्र देवेन्द्रस्य मनोरथः ॥१५॥
इत्युक्त्वा मुनिना शीघ्रं जयाशीर्भिः प्रपूजितः। प्रययौ रुक्मिणीसूनू रम्यं शङ्खालयं गिरिम् ॥१६॥
स्थित्वा शङ्खविलद्वारे कृतनादो महाबलः। सेतोर्विदारणारम्भं चकार मकरध्वजः ॥१७॥
ततः शङ्खो विनिष्क्रम्य स्वविलाद्बलदर्पितः। अब्रवीद् भीषणं वाक्यं द्रंष्ट्रादीप्तविलोचनः ॥१८॥
कस्याज्ञया त्वया क्रूर मम वीर्याभिरक्षितम्। अगम्यं त्रिदशैश्चापि क्रियते सेतुदारणम् ॥१९॥
इत्युक्त्वा सहसा दैत्यो रक्तास्यो रक्तलोचनः। तलेनाहत्य प्रद्युम्नं चकारातीव विह्वलम् ॥२०॥

ततः क्षणात् समुत्थाय बाहुयुद्धेन दानवम्। भूमौ निपातयामास प्रद्युम्नो बलिनां वरः ॥२१॥
भूमौ निपतितं शङ्खं विष्णुशङ्खसमस्वनम्। पादेनाक्रम्य जठरे पुपूरेऽतिशयं तदा ॥२२॥
शङ्खनादेन घोरेण प्रबुद्धः कच्छपासुरः। जलान्निष्क्रम्य बलवान् ननादातिशयं भयात् ॥२३॥
ततो विराधं घनघोरनिःस्वनं महामुखं मण्डललोचनद्वयम्।
ददर्श वीरो मधुसूदनात्मजो जलोषितं शैलसमानविग्रहम् ॥२४॥

मार्कण्डेय उवाच

ततः शङ्खनिनादेन विराधस्य स्वनेन च। विलं प्रकम्पितं दृष्ट्वा किमेतज्जातविभ्रमः ॥२५॥
परिशङ्क्य रिपोः किञ्चिद्भयं भयविधायिभिः। निमित्तैः सहसा राजा खड्गबाणधनुर्धरः ॥२६॥
सन्नद्धकवचो घोरैर्योधैः कतिपयैर्वृतः। शैलशृङ्गप्रतीकाशो भिन्नवैडूर्यसुप्रभः ॥२७॥
ममाज्ञातप्रभावः को विराधाख्यं ममानुजम्। विरोधयति दुर्बुद्धिरित्युक्त्वा क्रोधमूर्छितः ॥२८॥
निष्क्रम्य स्वविलात् तस्थौ श्रीमानसुरसत्तमः। समक्षमागतं दृष्ट्वा महेन्द्रदमनं रुषा ॥२९॥
ततो विरोधिनं त्यक्त्वा विराधं कूर्मरूपिणम्। दैत्येन्द्राभिमुखस्तस्थौ रथमारुह्य कैशविः ॥३०॥
समक्षमागतं दृष्ट्वा प्रद्युम्नं युद्धकाङ्क्षिणम्। वाक्यं क्रूरतरं प्राह श्रीमानसुरसत्तमः ॥३१॥
कस्याज्ञया त्वया क्रूर वध्यते मम कच्छपः। कस्य पुत्र इति त्वं च ज्ञातुमिच्छामि तद्वद ॥३२॥
तस्य तद्वचनं श्रुत्वा दैत्येन्द्रस्य महात्मनः। अब्रवीन्मधुरं वाक्यं प्रद्युम्नो बलिनां वरः ॥३३॥
निपातितो मया शङ्खः शङ्खदुन्दुभिनिःस्वनः। विराधं पातयिष्यामि दुरात्मानं जलोषितम् ॥३४॥
प्रद्युम्न इति विख्यातो विष्णोर्भगवतः सुतः। प्राप्तो युष्मद्विनाशाय देवेन्द्रस्य शुभेच्छया ॥३५॥
तस्य तद्वचनं श्रुत्वा रोषाद्रक्तविलोचनः। उवाच निष्ठुरं वाक्यं विहस्यासुरसत्तमः ॥३६॥
यदि केशवपुत्रस्त्वं सम्प्राप्तो भद्रकं कृतम्। चिरकालं मया ध्यातं लब्धं संदर्शनं तव ॥३७॥
त्वां विलोक्य रणे सुप्तं रुधिरस्रावविप्लुतम्। शम्बरस्य वधाज्जातो मन्युर्मे शान्तिमेष्यति ॥३८॥
इत्युक्त्वा दमनैस्तीव्रैरभिपीड्याधरं स्वकम्। ववर्ष शरवर्षौघं श्रीमानसुरसत्तमः ॥३९॥
ततस्तस्मिन् क्षणे शीघ्रं प्रद्युम्नोऽपि महाबलः। जगाद कुपितो वाक्यं मुदितादित्यसन्निभः ॥४०॥
त्वां निपात्य दुरात्मानं त्रिदशाधिपकण्टकम्। चन्द्रावत्या विवाहं च निर्विघ्नं वर्तयाम्यहम् ॥४१॥
इत्युक्त्वा रुक्मिणीसूनुः कृतगाण्डीवमण्डलः। मुमोच सहसा बाणं रुक्मपुङ्खविभूषणम् ॥४२॥
ततस्तस्मिन् क्षणे घोरे वर्तमाने रणोत्सवे। गरुडेनागतः शीघ्रं शङ्खचक्रगदाधरः ॥४३॥
प्रहृष्टैस्त्रिदशैः सार्धमप्सरोगणवेष्टितः। पूजार्थं रुक्मिणीसूनोः सम्प्राप्तस्त्रिदशेश्वरः ॥४४॥
ततो मुमोच दैत्येन्द्रो ज्वलत्कोपानलाकुलः। उल्कामुखं बिडालास्यं ज्वालामालातिभीषणम् ॥४५॥
तच्छस्त्रं वारयामास प्रद्युम्नोऽपि महाबलः। गृद्ध्रकङ्कमुखं चैव काकोलूकमुखं शरम् ॥४६॥
मुमोच स महाबाहुर्महेन्द्रदमनस्तथा। व्याघ्रसिंहशृङ्गालास्यैः सारमेयमुखैस्तथा ॥४७॥
तच्छरं वारयामास प्रद्युम्नो बलिनां वरः। एकैकैनास्त्रमुख्येन वीरमेकैकमुत्तमम् ॥४८॥
प्रद्युम्नः पातयामास तत्क्षणात् समरान्तरे। स्तोकावशिष्टं स्वबलं प्रसमीक्ष्य महासुरः ॥४९॥
प्रद्युम्नस्य विनाशाय नागास्त्रं सन्दधे तदा। ततो मुमोच दैत्येन्द्रो महेन्द्रदमनो रुषा ॥५०॥
विषाग्निज्वलिताकाशं नागास्त्रं घोररूपिणम्। नागास्त्रं पतितं दृष्ट्वा विषवह्निकलापिनम् ॥५१॥
हाहाशब्दो महाञ्जातो देवानां समरे तदा। नागास्त्रदग्धः प्रद्युम्नः पतितश्चातिविह्वलः ॥५२॥
पक्षवातेन तार्क्ष्यस्य लब्धचेता बभूव ह। नागास्त्रोऽपि दुराधर्षस्तार्क्ष्यपक्षनिपीडितः ॥५३॥
पपात सहसा भूमौ छिन्नमूल इव द्रुमः। एवं विधे महद्युद्धे नारदो मुनिसत्तमः ॥५४॥
प्रद्युम्नं प्राह चागत्य वधोपायं शृणुष्व मे। ब्रह्मणा भाषितं पूर्वं स्मर वाक्यं मनोभव ॥५५॥
मागा विह्वलतां वीर पुत्रोऽसि मधुविद्विषः। शस्त्रेणायं त्वया जेतुं न शक्यो दानवोत्तमः ॥५६॥
मुष्टिमुद्यम्य वेगेन हन्यतामस्य मूर्धनि। इति नारदवाक्येन वेगान्निःसृत्य कैशविः ॥५७॥
मुष्टिमुद्यम्य वेगेन शिरस्येनमताडयत्। ततः पपात दैत्येन्द्रः कम्पयन्निव मेदिनीम् ॥५८॥
उद्वमन् रुधिरोद्गारं मुखेन नयनेन च। सुप्रभावासिनः सर्वे संहते शक्रतापने ॥

पातालं विविशू रम्यं प्रद्युम्नभयपीडितः ॥५९॥
विचित्रपुष्पाणि निपेतुरम्बराद्धते सुरेन्द्रे हरिबालकेन। नेदुस्तदा दुन्दुभयो मनोज्ञा जयेति देवा अपि चुक्रुशुर्मुदा ॥६०॥
हते तस्मिन् महादैत्ये वाग्वती सरितां वरा। नारीरूपधरा भूत्वा जगाम मधुसूदनम् ॥६१॥
विष्णो जिष्णो हृषीकेश चक्रपाणे चतुर्भुज। उपेन्द्र देवकीपुत्र भद्रकीर्त्ते नमोऽस्तु ते ॥६२॥
केशवो रुक्मिणीनाथो माधवो मधुसूदनः। सत्यभामापतिश्चासि द्वारकावासिसुप्रिय ॥६३॥
कंसासुररिपुश्चासि रुक्मणीपतिरेव च। नमोऽस्तु लक्ष्मीपतये धरणीपतये नमः ॥६४॥
स्थूलं कूर्मवपुः कृत्वा मन्दरं विधृतं त्वया। वराहरूपमास्थाय त्वयैव धरणी धृता ॥६५॥
कार्त्तवीर्यनिहन्ताऽसि त्वं हि भार्गवनन्दनः। निहन्ता रावणस्यापि त्वमेव रघुवंशजः ॥६६॥
त्राता त्राणार्थिनां चासि दाता सर्वसुखस्य च। स्थितिकर्ता च लोकानां त्वमेव परिवर्तसे ॥६७॥
समर्थोऽसि हृषीकेश सेतुबन्धविदारणे। गङ्गां द्रष्टुं गमिष्यामि त्वत्प्रसादाज्जनार्दन ॥६८॥
वाग्वत्या वचनं श्रुत्वा हर्षोत्फुल्लविलोचनः। सेतुं विदारयामास चक्रेण भगवान् हरिः ॥६९॥
सेतुबन्धे प्रभिन्ने तु विष्णुना प्रभविष्णुना। उत्पपात महाघोरो विराधः कच्छपासुरः ॥७०॥
प्रभिन्नसेतुमालोक्य स क्रूरः कच्छपासुरः। वामहस्तेन दोलाद्रिं स्वर्णशृङ्गं परेण तु ॥७१॥
धृत्वा पातितुमारेभे सेतुबन्धस्य कारणात्। शैलद्वयं दानवेन धृतं वीक्ष्य चतुर्भुजः ॥७२॥
मनसाऽप्यतिवेगेन गत्वा दोलाचलं प्रभुः। कीलेश्वरं स्थापयित्वा स्वर्णशृङ्गं जगाम ह ॥७३॥
तत्र स्वर्णेश्वरं लिङ्गं स्थापयित्वा जनार्दनः। भूयो जगाम तत्रैव यत्रास्ते कच्छपासुरः ॥७४॥
एवं लिङ्गद्वयं विप्र कृष्णेन स्थापितं स्वयम्। लिङ्गद्वयस्य ये भक्ता भविष्यन्ति नरा भुवि ॥७५॥
तेषां मनोरथप्राप्तिर्भविष्यति न संशयः। चैत्रकृष्णचतुर्दश्यां कीलेश्वरमनुत्तमम् ॥७६॥
पूजयिष्यन्ति ये लोकास्ते वै कैलासवासिनः। शिवरात्रिचतुर्दश्यां स्वर्णशृङ्गेश्वरान्तिके ॥७७॥
दीपमालां करिष्यन्ति भयं तेषां न भास्करेः। स्वर्णशृङ्गेश्वरं देवं तथा कीलेश्वराभिधम् ॥७८॥
द्रक्ष्यन्ति ये नरा विप्र ते कृतार्था न संशयः। स्वर्णशृङ्गेश्वरोत्पत्तिं तथा कीलेशसम्भवम् ॥७९॥
श्रोष्यन्ति ये नरा भक्त्या तेषां पापं विनश्यति। विद्यालाभो ब्राह्मणस्य क्षत्रियो विजयी भवेत् ॥८०॥
वैश्यो धनसमृद्धः स्याच्छूद्रः कामानवाप्नुयात्। विद्यार्थी लभते विद्यां धनार्थी लभते धनम् ॥८१॥
गुर्विणी जनयेत् पुत्रं मोक्षार्थी मोक्षमाप्नुयात्। बहुनोक्तेन किं कार्यं यं यं प्रार्थयते नरः।
तं तं काममवाप्नोति नात्र कार्या विचारणा ॥८२॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये दशमोऽध्यायः ॥१०॥

---

मार्कण्डेयले भन्नुभयो – फौंज जस्ता चन्द्रमा पश्चिम दिशापट्टि पुगेपछि आइपुगेका नारदलाई देखेर प्रद्युम्नले भने। हे देवर्षि ! बालक थोरै बल भएको मैले त्यो जित्न गाह्रो पर्ने दानवराजलाई कसरी जितिन्छ ? ती महान् प्रद्युम्नको त्यो बोली सुनेर भगवान् नारद मुनिले यस्तो कुरा भने – दुरात्मा दैत्येन्द्रले लोकपालहरूद्वारा रक्षा गरिएको तीनै लोक जित्यो, त्यस्तो जित्न ज्यादै मुस्किल पर्ने दानवराजलाई ब्रह्माजीको वरदानबाट नै हे महाबाहु ! तिमीले जित्नेछौ ॥१–५॥

मार्कण्डेयले भन्नुभयो – त्यसपछि खुसी मन भएका, हर्षले गर्दा रोमाञ्चित भएका श्रीमान् मकरकेतुले प्रियालाई यस्तो कुरा भने – हे कमलानना ! तिमीले महर्षिको यो कुरा सुन्यौ ? हे देवी ! हरतरहले मेरो जीतका लागि मङ्गल गर। गहभरि आँसु गर्दै प्रभावतीले पतिको विजय चाहेर मङ्गल रचिन्। देवीले मङ्गल गरिएका मकरकेतनलाई देखेर खुसी मन भएका मुनिमा श्रेष्ठ नारदले भने – तिम्रा बुबा शङ्ख, चक्र, गदा लिएका भगवान् विष्णु आज तिम्रो विजय हेर्न गरुडमा चढेर आउनुहुनेछ। हे बाबु ! तिम्रै विजय हेर्न देवताहरूका साथ भएका भगवान् इन्द्र पनि आउनुहुनेछ। जित्न मुस्किल पर्ने शङ्ख र कर्नालको जस्तो स्वर भएको शब्द गर्ने शङ्ख नाम भएको देवकण्टक आलीको रक्षा गरेर बस्दछ। आफ्नो जीत चाहने तिमीले बलैसँग लात हानेर जसरी आवाज हुन्छ, त्यसरी नै त्यस दुराचारीलाई फुक्नुपर्छ। वज्रको आवाज जस्तो शक्ति भएको, डर लाग्दो स्वरले दुरात्मा दानवहरूमा ठूलो त्रास हुनेछ। दाजुभाइको बलले मात्तिएको दुरात्मा दैत्यलाई मारेर हे बाबु ! तिमीले इन्द्रको इच्छा पूरा गर्नुपर्छ ॥६–१५॥

यति भनेर मुनिले जय र आशीर्वादले सम्मान गरिएका रुक्मिणीका छोरा चाँडै नै शङ्ख बस्ने रमणीय पर्वतमा गए।

शङ्खको खोँचको ढोकामा बसी शब्द गर्ने महाबली प्रद्युम्नले आली भत्काउने काम सुरु गरे। अनि बलले मात्तिएको, दाह्राले बलेको आँखा भएको शङ्खले आफ्नो प्वालबाट निस्की डरलाग्दो कुरा भन्यो। हे क्रूर ! कसले भनेर मेरो बलले रक्षा गरिएको, देवताहरूले पनि केही गर्न नसक्ने आली भत्काउँछस् ?। यति भनेर रातो मुख र रातै आँखा भएको दैत्यले तुरुन्तै प्रद्युम्नलाई थप्पड हानेर ज्यादै नै विह्वल पाऱ्यो ॥१६-२०॥

त्यसपछि बलशालीहरूमा श्रेष्ठ प्रद्युम्नले तुरुन्तै उठेर बाहुयुद्धद्वारा दानवलाई भुईंमा पछारिदिए। विष्णुको शङ्खको जस्तो स्वर भएको, भुईंमा पछारिएको शङ्खलाई खूबसँग भुँडीमा लात्ताले हानेर बेस्करी बजाए। डर लाग्दो शङ्खनादले बिउँझेको बलवान् कच्छपासुर पानीबाट निस्केर डरले खूब चिच्यायो ॥२३॥ त्यसपछि घनघोर शब्द गर्ने, ठूलो मुख भएको, बाटुला दुई आँखा भएको, पानीले भिजेको, पर्वत जस्तो शरीर भएको विराधलाई मधुसूदनका वीर छोराले देखे ॥२१-२४॥

मार्कण्डेयले भन्नुभयो – अनि शङ्ख दैत्यको स्वरले र विराधको स्वरले पनि यो गुफा थर्किएको देखेर हडबडाएको, डर गराउने कारण मात्रका शत्रुहरूको केही भयको शङ्का गरेर फटपट खड्ग, बाण र धनु लिएको, कवच लागएको, कतिपय भयङ्कर लडाकुहरूले घेरिएको, मानौं शैलशृङ्गसमान वैदूर्यमणिको जस्तो कान्ति भएको राजा। मेरो प्रभाव नजानेको को बुद्धिहीन मेरो भाइ विराधको विरोध गर्छ ? यस्तो भनेर अत्यन्त क्रुद्ध हुँदै दैत्यराज आफ्नो विलबाट निस्केर खडा भयो। रीसले अगाडि आएको महेन्द्रदमनलाई देखेर विरोध गर्ने कच्छपरूप भएको विराधलाई छोडेर रथमा चढेका केशवका छोरा दैत्येन्द्रको अगाडि उभिए ॥२५-३०॥

अगाडि आएका लड्न खोज्ने प्रद्युम्नलाई देखेर श्रीमान् दैत्यले ज्यादै क्रूरतर वाक्य बोल्यो – क्रूर ! कसले भनेर तँ मेरो पक्षलाई पीडा दिन्छस् हँ ? कसको छोरो होस् तँ भन, म जान्न चाहन्छु। त्यो ठूलो दैत्येन्द्रको बोली सुनेर बलशालीहरूमा श्रेष्ठ प्रद्युम्नले मीठो बोली बोले। शङ्ख र कर्नालको शब्द गर्ने शङ्खलाई मैले पछारिदिएँ, अब पानीले भिजेको दुरात्मा विराधलाई पछार्नेछु। प्रद्युम्न भनेर प्रख्यात भएको विष्णु भगवान्‌को छोरो देवेन्द्रको शुभेच्छाद्वारा तिमीलाई मार्नका लागि आइपुगेको छ ॥३१-३५॥

तिनको त्यो कुरो सुनेर रीसले राता आँखा भएको असुरश्रेष्ठले हाँसेर कठोर वचन बोल्यो। यदि तिमी केशवका छोरा आइपुगेको हो भने ठीकै गऱ्यो, धेरै कालदेखि प्रतीक्षा गरेको तिमीसँग भेटघाट भयो। लडाईंमा तिमीलाई रगतको धारोले मुछिएको देखेर शम्बरको मृत्युबाट उत्पन्न भएको मेरो रीस शान्त हुनेछ। यति भनेर आफ्नो तल्लो ओठलाई दाँतले टेकेर ती असुरले बाणको वर्षा गरे। तुरुन्तै त्यसै बेला भर्खर निस्केका सूर्यसमान, रिसाएका महाबली प्रद्युम्नले पनि भने – देवराज इन्द्रको काँढो भएको तँ दुरात्मालाई पछारेर म निर्विघ्न भई चन्द्रावतीसँग विवाह गर्नेछु। यति भनेर रुक्मिणीका छोराले गाण्डीवलाई बाटुलो गरेर सुनको प्वाँखले सिंगारिएको बाण फटपट छोडे ॥३६-४२॥

त्यसपछि त्यो चलिरहेको भयङ्कर लडाईंमा शङ्ख, चक्र, गदा, लिएका श्रीकृष्ण गरुडद्वारा चाँडै नै आउनुभयो ॥४३॥ खुसी भएका अप्सराहरूले घेरिएका इन्द्र पनि देवताहरूका साथ रुक्मिणीका छोराको पूजाका लागि आइपुगे ॥४४॥ बल्दो रीसरूपी आगोले भाउन्निएको दैत्येन्द्रले ज्वालै ज्वालाले अत्यन्त डरलाग्दो भएको, उल्कामुख र विडालास्य नामका बाण प्रहार गऱ्यो ॥४५॥ पराक्रमी प्रद्युम्नले पनि त्यो शस्त्र छेके। ठूला हात भएको महेन्द्रमनले गिद्ध र ढुङ्गीफोरको मुख भएको, त्यस्तै काग र लाटेकोसेरोको मुख भएको बाण छोड्यो। बाघ, सिंह, श्याल र कुकुरको मुख भएका शरले बलियाहरूमा पनि बलिया प्रद्युम्नले ती बाणको प्रतिरोध गरे। एक एक मुख्य अस्त्रले एक एक उत्तम वीरलाई उत्तिखेरै त्यस लडाईंको बीचमा प्रद्युम्नले ढलाए। त्यस बेला आफ्नो सेना थोरै रहेको देखेर महासुरले प्रद्युम्नको नाशका लागि नागास्त्र लियो। त्यसपछि महेन्द्रमन दैत्येन्द्रले रीसपूर्वक विषाग्निले आगो बाल्ने भयङ्कर आकारको नागास्त्र छोड्यो ।४३-५१॥

विषको ज्वालाको समूहले युक्त नागास्त्र फ्याँकेको देखेर युद्धमा देवताहरूको ठूलो हाहाकार भयो। नागास्त्रले पोलिएका प्रद्युम्न ज्यादै विह्वल भएर लडे, गरुडको प्वाँखको हावाले होसमा आए। नाश गर्न नसकिने नागास्त्र पनि गरुडको पखेटाले पिरिएर फेद काटिएको रुख झैं भुईंमा खस्यो। यस्तो किसिमको महायुद्धमा प्रद्युम्नलाई ठूला मुनि नारदले आएर दैत्यराजको वध गर्ने मेरो उपाय सुन भने। हे मनबाट पैदा हुने कामदेव ! पहिल्यै ब्रह्माजीले भनेको कुरा स्मरण गर, हे वीर ! विह्वल नहोऊ। मधुसूदनका पुत्र तिमीले शस्त्रद्वारा यो उत्तम दानवलाई जित्न सक्दैनौ। वेगले मुड्की उठाएर यसको टाउकोमा प्रहार गर ॥५२-५६½॥

यस्तो नारदको वाक्यले गर्दा प्रद्युम्न वेगसँग निस्केर वेगले मुड्की उठाएर त्यसलाई टाउकोमा प्रहार गरे। मुख र आँखाबाट रगतको खोलो छाड्दै, पृथ्वीलाई नै थर्काउला झैं गरेर दैत्येन्द्र भुईंमा पछारियो। इन्द्रलाई सताउने त्यो दैत्य मरेपछि सबै सुप्रभामा बस्ने दैत्यहरू प्रद्युम्नको डरले आत्तिएर राम्रो पातालमा पसे। प्रद्युम्नले दैत्येन्द्रलाई मारेपछि आकाशबाट रङ्गविरङ्गका फूलहरू बर्सिए। देवताहरूले मनमाफिकका कर्नाल बजाए र हर्षसाथ जय शब्द गरे ॥५७-६०॥

त्यो ठूलो दैत्य मारेपछि नदीहरूमा श्रेष्ठ वाग्वती स्त्रीको रूप लिएर मधुसूदन भएको ठाउँमा गइन्। हे विष्णु ! जिष्णु ! हृषीकेश ! चक्रपाणि ! चतुर्भुज ! उपेन्द्र ! देवकीका छोरा ! कल्याणदायक कीर्ति भएका तपाईंलाई नमस्कार छ। केशव ! रुक्मिणीका स्वामी ! माधव ! मधुसूदन ! द्वारकावासीका सुप्रिय ! सत्यभामाका पति हजुर नै हुनुहुन्छ। कंसासुरका शत्रु हुनुहुन्छ, रुक्मिणीका पति हुनुहुन्छ। लक्ष्मीपति र पृथ्वीपति तपाईंलाई नमस्कार छ। ठूलो कछुवाको शरीर लिएर तपाईंले मन्दर पर्वत धारण गर्नुभयो, तपाईंले नै वराहरूप लिएर पृथ्वीलाई धारणा गर्नुभयो। कार्त्तवीर्यलाई मार्ने तपाईं हुनुहुन्छ, तपाईं नै भार्गवका छोरा हुनुहुन्छ। रावणको वध गर्न रघुवंशमा जन्मने पनि तपाईं नै हुनुहुन्छ। रक्षा चाहनेको रक्षा गर्ने हुनुहुन्छ, सबै सुखका दाता हुनुहुन्छ, लोकहरूको स्थिति गर्ने र परिवर्तन गर्ने पनि तपाईं नै हुनुहुन्छ। हे हृषीकेश ! हजुर नै बाँध फोर्न समर्थ हुनुहुन्छ। हे जनार्दन ! तपाईंको अनुग्रहबाट गङ्गालाई हेर्न जान्छु ॥६१-६८॥

वाग्वतीको वचन सुनेर हर्षले प्रफुल्लित नेत्र भएका भगवान् हरिले चक्रद्वारा बाँध फोर्नुभयो। समर्थ विष्णुले सेतुबन्ध फोरेपछि विराध नामको डर लाग्दो कच्छपासुर उफ्रियो। बाँध फुटेको देखेर त्यो रिसाहा कच्छपासुरले देब्रे हातले दोलाद्रिलाई र अर्को हातले स्वर्णशृङ्गलाई लिएर बाँध फोरेको कारणले गर्दा हान्न लाग्यो। दुईवटा डाँडा दानवले दिएको देखेर विष्णु खूबसँगको मनोवेगले दोलाचलमा गई कीलेश्वरको स्थापना गरेर स्वर्णशृङ्गमा जानुभयो, र त्यहाँ स्वर्णेश्वर लिङ्गको स्थापना गरी जनार्दन फेरि जहाँ कच्छपासुर थियो, त्यहाँ जानुभयो ॥६९-७४॥

हे विप्र ! यसरी दुबै लिङ्ग कृष्ण आफैँले स्थापना गर्नुभयो। जो मानिसहरू पृथ्वीमा दुबै लिङ्गका भक्त हुन्छन्, तिनीहरूलाई इच्छित वस्तुको प्राप्ति निश्चय हुन्छ। चैत्र कृष्ण चतुर्दशीमा जो मानिसहरू उत्तम कीलेश्वरको पूजा गर्नेछन्, निश्चय नै तिनीहरू कैलासवासी हुनेछन्। शिवरात्रिको चतुर्दशीमा स्वर्णशृङ्गेश्वरमा जसले दीपमाला गर्नेछन्, तिनीहरूलाई यसबाट डर हुनेछैन। स्वर्णशृङ्गेश्वर देवलाई र कीलेश्वरलाई जुन मानिसहरूले भक्तिपूर्वक हेर्नेछन्, तिनीहरू निश्चय नै कृतार्थ हुनेछन्। स्वर्णशृङ्गेश्वरको र कीलेश्वरको उत्पत्ति जुन मानिसहरूले भक्तिपूर्वक सुन्छन्, तिनीहरूको पाप नाश हुन्छ। ब्राह्मणलाई विद्यालाभ हुन्छ, क्षत्रिय विजयी हुन्छ, वैश्य प्रशस्त धन भएको हुन्छ, शूद्रले इच्छा गरेको वस्तुहरू पाउनेछ, विद्यार्थीले विद्या पाउला, धन चाहनेले धन पाउला, गर्भिणीले छोरी पाउली, मोक्ष चाहनेले मोक्ष पाउला। धेरै भन्नाले के काम हुन्छ र मानिसले जे जे प्रार्थना गर्छन्, त्यही त्यही चाहेको कुरा पाउनेछन्, यसमा सोच्नै पर्दैन ॥७५-८२॥

स्कन्दपुराण अन्तर्गतको हिमवत्खण्डमध्ये नेपाल माहात्म्यको दशौं अध्याय पूर्ण भयो ॥१०॥

# अथ एकादशोऽध्यायः

श्रीकृष्णद्वारा शिवलिङ्गस्थापनं महेन्द्रदमनकथा च

(श्रीकृष्णद्वारा शिवलिङ्गको स्थापना र महेन्द्रदमनको कथा)

जैमिनिरुवाच

मार्कण्डेय मुनिश्रेष्ठ लिङ्गं कीलेश्वराभिधम्। स्वर्णशृङ्गेश्वरं लिङ्गं स्थापयित्वा जनार्दनः ॥१॥
किं चकार तदाख्याहि कच्छपोऽपि चकार यत्। महेन्द्रदमनस्यापि कथामतिमनोहराम् ॥२॥

मार्कण्डेय उवाच

श्रुत्वा त्वत्तो महाभाग न तृप्तिमधियाम्यहम्। साधु साधु महाभाग जैमिने मुनिसत्तम ॥३॥
श्रूयतामभिधास्यामि यच्चकार जनार्दनः। लिङ्गद्वये स्थापिते तु विष्णुना प्रभविष्णुना ॥४॥
पर्वतद्वयमूलं तु गतं पातालमेव च। उत्पातुं न च शक्तोऽभूत् तौ शैलौ कच्छपासुरः ॥५॥
बाहुयुद्धेन युयुधे प्रद्युम्नेन बलीयसा। नारदोऽपि तदा शीघ्रं प्रद्युम्नमिदमब्रवीत् ॥६॥
कृत्वोत्तानं दुरात्मानं विराधं दानवाधमम्। अस्य कुक्षिगतं रत्नं शीघ्रमादातुमर्हसि ॥७॥
महर्षेर्वचनं श्रुत्वा कृत्वोत्तानबलेन तम्। आददे सर्वरत्नानि खड्गेन लघुविक्रमः ॥८॥
परिवृत्य पुनः शीघ्रं सङ्क्रुद्धः कच्छपासुरः। प्रद्युम्नं त्रासयामास नर्दमानं पुनः पुनः ॥९॥
अत्यक्तजीवितं दृष्ट्वा सङ्क्रुद्धं कच्छपासुरम्। हरिपुत्रं पुनः प्राह नारदो मुनिपुङ्गवः ॥१०॥
अत्र दानववीराणां प्रसादाच्छूलधारिणः। वाग्वतीजलसंश्लेषात् वधस्तेषां न विद्यते ॥११॥
तस्माद्विक्षेप यत्नेन पक्षेन गरुडस्य च। पश्चाच्छिरोऽस्य च्छेतव्यं चक्रेण मकरध्वज ॥१२॥

तानि भ्रमन् शीतकरः पातकं न जहौ पुनः। ततो जगाम हिमगुर्दक्षिणाशां मनोहराम् ॥२३॥
तत्र भ्रान्त्वा त्वनेकानि तीर्थानि विविधानि च। अगस्त्यस्याश्रमं रम्यं जगाम शशलाञ्छनः ॥२४॥
लोपामुद्रापतिर्वीक्ष्य चन्द्रमाश्रममागतम्। महापातकिनं दृष्ट्वा निषीदेति वचोऽब्रवीत् ॥२५॥
उपविष्टस्ततस्तस्य वाक्यान्ते शशलाञ्छनः। प्रोवाच दण्डवद्भूमौ लोपामुद्रापतिं तदा ॥२६॥

चन्द्रमा उवाच -

हृता भार्या गुरोर्मोहान्मया वै मन्दबुद्धिना। तेन पातकिनो विप्र न सुखं विद्यते मम ॥२७॥
भ्रान्तानि सर्वतीर्थानि क्षेत्राण्युपवनानि च। पुर्यः सप्त मया दृष्टा उषित्वाऽस्मि व्रतं चरन् ॥२८॥
तथाऽपि नो मुने जाता मम पापस्य निष्कृतिः। कथयाशु महाभाग येन मे निष्कृतिर्भवेत् ॥२९॥

मार्कण्डेय उवाच -

इति चन्द्रवचः श्रुत्वाऽगस्त्यः प्राह ततस्तु तम्। द्विजराज त्वया यस्मात् पशुवन्मूढचेतमा ॥३०॥

अगस्त्य उवाच -

भार्यां हृत्वा गुरोश्चैव पशुकार्यं कृतं ध्रुवम्। तस्मात् पशुपतिं देवं गत्वा श्लेष्मान्तकं वनम् ॥३१॥
आराधय महाभाग ततः शुद्धो भविष्यसि। मयाऽपि काशी सन्त्यक्ता विन्ध्यपर्वतकारणात् ॥३२॥
ततः प्रभृति भो चन्द्र लभ्यते न मया सुखम्। अतो मयाऽपि गन्तव्यं श्लेष्मान्तकवनं सह ॥३३॥
इति तस्य वचः श्रुत्वा चन्द्रमाः प्राह तं मुनिम्। मम भाग्योदयो जातो भवता यदि गम्यते ॥३४॥
उत्तिष्ठ मुनिशार्दूल गमनं रचय प्रभो। ततः श्लेष्मान्तकवनं सोऽगस्त्यश्चन्द्रसंयुतः ॥३५॥
ययावाकाशमार्गेण द्वितीय इव भास्करः। श्लेष्मान्तकवनं क्षेत्रं दृष्ट्वा परमदुर्लभम् ॥३६॥
मुदमाप तदाऽऽगस्त्यश्चन्द्रमःसहितो मुनिः। वाग्वत्याः पयसि स्नात्वा दृष्ट्वा देवीं तु वत्सलाम् ॥३७॥
दक्षिणद्वारि सन्तस्थौ दृष्ट्वा पशुपतीश्वरम्। ततश्चन्द्रः समालेभे तपस्यामतिदारुणाम् ॥३८॥
शङ्खमूले महारम्ये आश्रमे कुम्भसम्भवे। विधाय तस्थिवाँस्तत्र यावच्चन्द्रो विशुद्ध्यति ॥३९॥

मार्कण्डेय उवाच -

ततोऽतिभक्तितश्चित्तं विषयेभ्यो नियम्य च। निराहारो विधुर्दध्यौ वाग्वतीपश्चिमे तटे ॥४०॥
नैश्चल्यं स्थाणुवत् प्राप्तं शीतवातादिपीडितम्। वीक्ष्य प्रसन्नो भगवाँस्तदा पशुपतीश्वरः ॥४१॥

श्रीपशुपतिरुवाच -

तुष्टः पशुपतिः प्राह स्वयं चन्द्रमसं प्रभुः। सन्तुष्टोऽहं हिमकर सम्प्रार्थय मनोगतम् ॥४२॥

मार्कण्डेय उवाच -

अदेयमपि दास्यामि वरं तुभ्यं न संशयः। उन्मील्य चक्षुषी चन्द्रो दृष्ट्वा पशुपतिं प्रभुम् ॥४३॥

चन्द्रमा उवाच -

प्रणम्य दण्डवद्भूमाविदं वचनमब्रीत्। यदि तुष्टोऽसि मे नाथ प्रार्थयेऽहं वरद्वयम् ॥४४॥
एकं पापात् प्रमुच्येऽहं श्रीशम्भो गुरुतल्पगात्। अपरं क्षेत्रमाहात्म्यं स्वपूजासहितं वद ॥४५॥
इति चन्द्रमसो वाक्यं श्रुत्वा शम्भुर्वचोऽब्रवीत्। मद्दर्शनेन हिमगो शुद्धो जातोऽसि सर्वथा ॥४६॥
तथाऽपि चन्द्र मत्क्षेत्रे मल्लिङ्गं स्थापय स्वयम्। महापातकसंयुक्तो मानवो दैवयोगतः ॥४७॥
वाग्वत्याः पयसि स्नात्वा वत्सलां मां विलोक्य च। मुच्यते सर्वपापेभ्यो नात्र कार्या विचारणा ॥४८॥
मम दक्षिणभागे तु यस्तु प्राणान् परित्यजेत्। प्रभावादस्य क्षेत्रस्य नरकं नाभिगच्छति ॥४९॥
मम पूर्वेण भागेन वाग्वत्याः सलिले शुभे। स्नायते सततं यस्तु तस्य पुण्यं महद्भवेत् ॥५०॥
मम शूलसमुद्भूतं प्रावृट्समयनिःसृतम्। तीर्थं मृगोदकं नाम पुण्यकृद्भिः प्रदृश्यते ॥५१॥
मृगोदकोद्भवे तीर्थे वाग्वत्याः पश्चिमे तटे। जन्मान्तरकृतैः पापैर्मुच्यते नात्र संशयः ॥५२॥
अत्र बदरिका नाम वाग्वत्याः पूर्वके तटे। तत्रापि स्नानमात्रेण पार्वती परितुष्यति ॥५३॥
अत्र कोषोदकं नाम तीर्थं कामफलप्रदम्। कोषं कोषं समाहृत्य सुरैः सर्वैः प्रकल्पितम् ॥५४॥
तीर्थे कोषोदके चापि तदग्रे च नदीजले। तत्राभिषेकं यः कुर्यात् सोऽश्वमेधं फलं लभेत् ॥५५॥

त्रिसन्ध्यं तु समासाद्य सन्ध्यां यः समुपासते। किल्विषात् स्वकृताव्यक्तात् स द्विजः परिमुच्यते ॥५६॥
भृगुप्रपतनं नाम कन्दरञ्चापि विद्यते। तस्मात् प्रपतनाद्वाऽपि स्वर्गलोके महीयते ॥५७॥
भृगुकन्दरमूले तु ब्रह्मभेदे मनोरमे। संस्नाति विधिना यस्तु ब्रह्मलोकं स गच्छति ॥५८॥
अत्र गोखुरकं नाम तीर्थं कामफलप्रदम्। तत्राभिषेकं यः कुर्यात् गोसहस्रफलं लभेत् ॥५९॥
गौरीशिखरमूले तु वाग्वत्यां स्नाति यो जनः। स्त्रीसौभाग्यमवाप्नोति देवीलोकं स गच्छति ॥६०॥
स्कन्दकुण्डं समासाद्य स्नायते यस्तु मानवः। स्कन्दलोकमवाप्नोति भूत्वा वैश्वानरद्युतिः ॥६१॥
अत्र पञ्चनदं नाम तीर्थं ब्रह्मनिषेवितम्। पञ्चयज्ञफलं तत्र स्नानमात्रेण लभ्यते ॥६२॥
शूलोद्भवे शुभे तीर्थे संस्नाति यस्तु मानवः। जातिस्मरत्वमाप्नोति ब्राह्मणस्तु विशेषतः ॥६३॥
प्राप्य स्नानकपानीयं गुह्यं गुह्यकरक्षितम्। संस्नाति विधिना यस्तु यक्षलोकं स गच्छति ॥६४॥
अत्र यक्षोदकं प्राप्य तीर्थं कन्दरनिःसृतम्। स्नायते विधिना येन मृत्युस्तं च न पश्यति ॥६५॥
योगकुण्डे देववाप्यां कुमारकन्दरेऽपि च। ब्रह्मादिभ्यो विशेषेण स्नायते स्वर्गकाङ्क्षिभिः ॥६६॥
वासुकेः प्रथमं कार्यं मत्पूजाराधनं सदा। घृतेन मधुना वाऽपि दध्ना चेक्षुरसेन च ॥६७॥
गन्धोदकेन क्षीरेण शीततोयेन वा पुनः। मत्स्नानं कारयेद्यस्तु तस्य पुण्यफलं महत् ॥६८॥
अनेनैव भवेत् स्वर्गे लब्धभाग्यो नरोत्तमः। घृतस्नानेन मल्लोके मधुना मम मन्दिरम् ॥६९॥
दध्ना वै वैष्णवं लोकं प्रयाति मम शासनात्। वैद्याधरं पदं याति स्नानादिक्षुरसेन तु ॥७०॥
गन्धोदकेन गान्धर्वं क्षीरेण शशिनः पदम्। शीतोदकस्य स्नानेन सर्वपापैः प्रमुच्यते ॥७१॥
अङ्गपूजां तु यः कुर्यात् पुष्पैर्नानाविधैर्मम। सर्वकामफलं भुक्त्वा मोदते मम मन्दिरे ॥७२॥
अङ्गप्रदीपं यः कुर्यात् मम भक्त्या सुसंयुतः। स्वयंप्रभेषु देशेषु तस्योत्पत्तिः प्रजापतेः ॥७३॥
अङ्गप्रदक्षिणं यस्तु करोति मम भक्तिमान्। रूपवान् धनवाँश्चैव वज्रसंहननो युवा ॥७४॥
विद्यावान् जायते लोके पुत्रपौत्रसमन्वितः। अङ्गपूजां तु यो दद्यात् मम भक्त्याऽतियत्नतः ॥७५॥
आयुष्मान् बलवान् वीरो जायते च महीपतिः। दीपमालां तु यः कुर्यद्भवने मम भक्तितः ॥७६॥
चक्षुष्मान् जायतेऽत्यन्तं तेजस्वी लोकपूजितः। गुग्गुलं दहते यस्तु ममाग्रे भक्तिसंयुतः ॥७७॥
इह लोके सुखं भुक्त्वाऽप्यन्ते याति परां गतिम्। तिलपात्रप्रदानेन त्रायते महतो भयात् ॥७८॥
तथैव च सुवर्णेन तथैव तिलधेनुना। हेमशृङ्गीं रौप्यखुरां कांस्यघण्टावलम्बिनीम् ॥७९॥
सवत्सां कपिलां दद्यात् तस्य यज्ञफलं भवेत्। रत्नकञ्चुकदानेन जायते रत्नवान् नृपः ॥८०॥
वस्त्रवान् वस्त्रदानेन भूमिदानेन भूमिवान्। गीतनृत्यप्रदानेन तूर्यनादानुमोदिना ॥८१॥
मम पार्श्वचरो भूत्वा जायते दुःखवर्जितः। नीलोत्पलार्कपद्मानां प्रदानेन श्रियं लभेत् ॥८२॥
वकेन विल्वपत्रेण वरदोऽस्मि विशेषतः। मोक्षो धत्तूरकेणापि करवीराद् धनप्रदः ॥८३॥
जात्यादिना सुगन्धेन पुष्पेण सुभगो भवेत्। पुष्पैः पत्रैः फलैस्तोयैर्मामर्चयति सन्ततम् ॥८४॥
सोऽपि स्वर्गफलं प्राप्य मोदते नात्र संशयः। यस्तु पूजयते भक्त्या पशुयोनिं मम प्रियाम् ॥८५॥
मुच्यते पशुपाशेभ्यः कामसिद्धिश्च लभ्यते। यो दद्यान्मम क्षेत्रेऽस्मिन् ब्राह्मणेभ्यश्च भोजनम्।
सोऽपि यज्ञफलं लब्ध्वा स्वर्गलोकमवाप्नुयात् ॥८६॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये चतुर्दशोऽध्यायः ॥१४॥

---

मार्कण्डेयले भन्नुभयो – त्यसपछि दैत्य र सर्पराजहरू समेत भएको देवसभा ज्यादै विह्वलतामा प्राप्त भई चित्रमा लेखिएको सभाझैं भयो। शिवको डरले गर्दा चन्द्रमाले तारालाई ल्याए। जुन बेलासम्म महात्मा शङ्करसँग चन्द्रमा लडे। त्यस बेलासम्ममा चन्द्रमाको औरस छोरो जन्मियो। त्यसपछि छोरोसहित तारा चन्द्रमाको घरबाट आइन्। ।१-२॥

तिनलाई देखेर सबै देवताहरू आश्चर्य भएर रहे, ती तारालाई ब्रह्माजीले भन्नुभयो – तारा यो कसको छोरो हो ? गुरुको अथवा चन्द्रमाको? ब्रह्माजीको बोली सुनेर लाजले तारा बोलिनन्। अनि एकै पटक देवताहरू खित्का छोडेर हाँसे ॥३-४॥

मार्कण्डेयले भन्नुभयो – देवताहरूको गलल्ल हाँसोले ताराको छोरोले लाज मानेर हेरिरहेका देवताहरूका अगाडि

आमालाई भन्यो। आमा ! बा को हो भन्नुहोस्, नत्र भने म मर्छु, तपाईंको अगाडि मलाई देखेर सबै देवताहरू हाँस्छन्। त्यसपछि ती ताराले छोरालाई ठूलो स्वरले भनिन्। गुरुको क्षेत्रमा निश्चय नै तिमी चन्द्रमाको छोरो भएर जन्मेका हौ। ताराको कुरा सुनेर ब्रह्माजीले बृहस्पतिलाई भन्नुभयो। सुभगा तारालाई लिनुहोस्, छोरो चन्द्रमालाई दिनुहोस्। भगवान्को कुरो सुनेर उनलाई बृहस्पतिले भने ॥५–१०॥

बृहस्पतिले भने – हे ब्रह्माजी ! यो छोरो मेरो हो कहिल्यै चन्द्रको हुन्न, पितामह छोरोसहितकी तारा मलाई दिनुहोस्। त्यसपछि चन्द्रमाले बृहस्पतिको कुरो सुनेर ब्रह्मालाई भने। चन्द्रमाले भने। पितामह ! यो छोरो मेरो हो, बृहस्पतिको हुँदै होइन ॥११–१२॥

ब्रह्माजीले भन्नुभयो – चन्द्र र गुरुले पनि विवाद गर्न हुँदैन। छोराले सोधिएकी ताराले जे भनिन्, त्यही नै साँचो हो। राजसूय गर्नेले पनि निश्चय दुःख पाउँछ। त्यसै हुनाले यहाँ विधिले अर्थात् भाग्यले गर्दा प्राप्त भएको क्लेशबाट दुःख पाए। देवताहरूको अगाडि बालकले बुधले झैं भनेकोले मेरो आज्ञाबाट हे महेश्वर ! यो बुध नामको होस्। त्यसपछि ती बृहस्पतिले कमलनयनी तारा लिए, औरस छोरो चन्द्रमाले लिए। त्यसपछि सभाको बीचमा पार्वतीका प्राणपियाराले भन्नुभयो। त्यो दुष्ट बुद्धि भएको चन्द्रले गुरुकी पत्नी हऱ्यो। यसैले महापापले युक्त भएको यज्ञको भोगबाट छुटेको र राजयक्ष्माले क्षीण होस्। त्यस्तै सबै देवताले बहिष्कार गरिएको होस्। यति भनेर चाँडै नै शिव कैलास जानुभयो। ती इन्द्रादि देवताहरू आफ्नो ठाउँमा गए अनि राजाहरू र मुनिहरू पनि आआफ्नो ठाउँमा गए ॥१३–२०॥

त्यहाँदेखि महापातकी क्षयरोगले पीडित भएका चन्द्रले कहीं पनि सुख पाएनन्। त्यसपछि शरीरशुद्धिका लागि चन्द्रमाले तीर्थ घुमे। हे जैमिनि ! पूर्व उत्तर पश्चिममा जति तीर्थहरू छन् ती घुमेका चन्द्रमाको पाप छुटेन। फेरि चन्द्रमा सुन्दर दक्षिण दिशातिर गए। त्यस्ता विभिन्न अनेकौं तीर्थहरू घुमेर चन्द्रमा अगस्त्यको राम्रो आश्रममा गए ॥२१–२४॥

आश्रममा आएका महापातकी चन्द्रमालाई लोपामुद्राका पतिले देखेर बस भने। तिनको बस भन्ने वाक्य सिद्धिएपछि चन्द्रमाले भुइँमा लौरोझैं पसेर अगस्त्यलाई भने – मोहले गर्दा मन्द बुद्धि भएको मैले गुरुकी पत्नी हरें, त्यसै कारणले पातकी मलाई सुख छैन। सबै तीर्थहरू क्षेत्रहरू उपवनहरू घुमिए। सातवटै पुरी मैले देखें, व्रत गरेर बसेको छु तैपनि हे मुनि ! मेरो पापको प्रायश्चित्त भएन। हे महाभाग ! जेले मेरो प्रायश्चित्त हुन्छ, त्यो चाँडै भन्नुहोस् ॥२५–२९॥

मार्कण्डेयले भन्नुभयो – यस्तो चन्द्रमाको वचन सुनेर तिनलाई अगस्त्यले भने ॥३०॥

अगस्त्यले भने – हे चन्द्रमा ! पशुको जस्तो मूर्ख बुद्धि भएको तिमीले गुरुकी पत्नी पनि हरेर निश्चय पशुले गर्ने जस्तो काम गऱ्यौ। त्यसैले श्लेष्मान्तक वनमा गई पशुपति देवको आराधना गर, हे महाभाग ! अनि शुद्ध हुनेछौ। विन्ध्यपर्वतको कारणले गर्दा मैले पनि काशी छोडें। त्यहाँदेखि हे चन्द्रमा ! मैले सुख पाएको छैन। यसैले म पनि सँगै श्लेष्मान्तक वन जान्छु ॥३१–३३॥

चन्द्रमाले ती मुनिलाई भने – यदि तपाईं जानुहुन्छ भने मेरो भाग्योदय भयो। हे श्रेष्ठ मुनि ! उठ्नुहोस् जाने तरखर गर्नुहोस्। त्यसपछि चन्द्रमाका साथ लागेका ती अगस्त्य दास्रो सूर्य झैं आकाशमार्गले श्लेष्मान्तक वनमा गए। थाहा पाइ नसक्नु श्लेष्मान्तक वनको क्षेत्र देखेर चन्द्रमा सहितका ती अगस्त्य मुनि खुसी भए। वाग्वतीको जलमा नुहाई वत्सलादेवी र पशुपतिको दर्शन गरी दक्षिण ढोकामा अडिए। त्यसपछि चन्द्रले अतिशय कठोर तपस्या गरे। साह्रै राम्रो अगस्त्यको आश्रम रहेको शङ्खमूलमा आफू शुद्ध नहुञ्जेलसम्म चन्द्रमा त्यहीं रहे ॥३४–३९॥

मार्कण्डेयले भन्नुभयो – त्यसपछि खूब भक्तिसाथ चित्तलाई विषयहरूबाट रोकेर वाग्वतीको पश्चिम तीरमा निराहार चन्द्रमाले ध्यान गरे। चीसो हावा आदिले पिरिएका निश्चय ठूटे जस्तो भएका चन्द्रलाई देखेर भगवान् पशुपति खुसी हुनुभयो। खुसीहुनुभएका स्वयं पशुपतिले चन्द्रमालाई भन्नुभयो ॥४०–४१॥

श्री पशुपतिले भन्नुभयो – हे चन्द्रमा ! म खुसी भएको छु। मनमा लागेको कुरा माग। दिन नहुने वर पनि म तिमीलाई निश्चय दिन्छु ॥४२॥

मार्कण्डेयले भन्नुभयो – आँखा उघारेर पशुपतिलाई देखी दण्डवत् प्रणाम गरी चन्द्रमाले यो कुरो भने ॥४३॥

चन्द्रमाले भने – हे नाथ ! यदि मसँग खुसी हुनुहुन्छ भने दुईवटा वर म माग्दछु, हे शम्भु ! एउटा हो गुरुको पत्नी हरेको पापबाट म छुटूँ, अर्को हो आफ्नो पूजासहित क्षेत्रको माहात्म्य भन्नुहोस् ॥४४–४५॥

यस्तो चन्द्रमाको कुरो सुनेर शम्भुले भन्नुभयो – हे चन्द्रमा ! मलाई देख्नाले शुद्ध भएकै छौ। तैपनि हे चन्द्र ! मेरो क्षेत्रमा आफैंले लिङ्गको स्थापना गर। दैवसंयोगले महापापले युक्त मानिस वाग्वतीको जलमा नुहाई वत्सलालाई र मलाई दर्शन गरेपछि सबै पापबाट छुट्छ, यसमा विचार गर्ने कुरै छैन। मेरो दक्षिण भागमा जसले प्राण छोड्छ, त्यो यस क्षेत्रको प्रभावले नरक जाँदैन। मेरो पूर्वपट्टि वाग्वतीको निर्मल जलमा जो सधैं नुहाउँछ,त्यसलाई पुण्य धेरै होस्। मेरो शूलबाट वर्षाकालमा निस्केको मृगोदक तीर्थ पुण्य गर्नेहरूले देखिन्छ ॥४६–५०॥

वाग्वतीको पश्चिम तीरमा रहेको मृगोदक तीर्थमा जाँदा अर्को जन्ममा गरेको पापहरूबाट छुट्दछ। यसमा शङ्का छैन। वाग्वतीको पूर्वी तीरमा यहाँ वदरिका नाम भएको छ, त्यहाँ नुहाउनाले मात्रै पनि पार्वती खुसी हुन्छिन्। यहाँ इच्छामाफिकको फल दिने कोषोदक नामको तीर्थ छ। सबै देवताहरूले कोष कोष एकत्रित गरेर बनाइएको हो। कोषोदक तीर्थमा त्यो अगाडिको नदीको पानीमा पनि जसले अभिषेक गर्छ, त्यसले अश्वमेधको फल पाउँछ। त्यहाँ गएर तीनै सन्ध्यामा जसले सन्ध्याको उपासना गर्दछ, त्यो द्विज आफूले गरेको अव्यक्त पापबाट छुट्दछ। भृगुपतन नामको गुफा पनि छ, त्यसबाट हाम फाल्नाले पनि स्वर्गलोकमा आनन्दसँग रहन्छ ॥५१-५६॥

भृगुकन्दरको फेदीमा रहेको सुन्दर ब्रह्मभेदमा जसले विधिपूर्वक नुहाउँछ, त्यो ब्रह्मलोकमा जान्छ। यहाँ इच्छा लागेको फल दिने गोखुरक नामको तीर्थ छ, त्यहाँ जसले अभिषेक गर्नेछ, त्यसले हजार गाई दानको फल पाउँछ। गौरीशिखरको फेदी वाग्वतीमा जो नुहाउँछ, त्यसले स्त्रीको सौभाग्य पाउँछ र देवीलोकमा जान्छ। स्कन्दकुण्डमा पुगेर जो मानिस नुहाउँछ, त्यो वैश्वानरद्युति भएर स्कन्दलोकमा पुग्छ। यहाँ ब्रह्माजीले वास गरिएको पञ्चनद नामको तीर्थ छ, त्यहाँ नुहाउनाले मात्रै पनि पञ्चयज्ञको फल पाइन्छ। शूलोद्भव तीर्थमा जो मानिसले नुहाउँछ, पूर्वजन्मको कुरा सम्झन्छ। विशेषतः ब्राह्मणलाई यो फल प्राप्त हुन्छ ॥५७-६२॥

गुह्यले रक्षा गरिएको गुप्त नुहाउने पानीमा गएर जसले विधिपूर्वक नुहाउँछ, त्यो यज्ञलोकमा पुग्छ। गुफाबाट निस्केको यक्षोदक तीर्थमा पुगेर जो विविपूर्वक नुहाउँछ, त्यसलाई मृत्युले देख्दैन। योगकुण्ड, देववापी र कुमारकन्दमा पनि स्वर्ग चाहनेहरूले विशेष गरेर ब्रह्मादिहरूले नुहाइन्छ ॥६५॥ पहिल्यै वासुकिमा मेरो पूजा आराधना गर्नू, घिउ, मह, दही, उखुको रस, गन्धोदक, दूध रशीतल जलले जसले मेरो स्नान गराउँछ, त्यसको ठूलो पुण्यफल छ। यसैले नै स्वर्गमा भाग्य भएको उत्तम मानिस होला। घिउले नुहाउनाले मेरो लोकमा, महले नुहाउनाले मेरो मन्दिरमा, दहीले नुहाउनाले विष्णुलोकमा मेरो आज्ञाबाट जान्छ। उखुको रसले नुहाउनाले विद्याधरको पदमा पुग्छ। गन्धोदकले नुहाउनाले गन्धर्वपद र दूधले नुहाउनाले शशीको पदमा पुग्छ। चीसो पानीले नुहाउनाले सबै पापबाट छुट्दछ ॥६३-७०॥

अनेक किसिमका फूलहरूले मेरो जसले जसले अङ्गपूजा गर्नेछ, त्यो सबै इच्छित वस्तुको फल भोगेर मेरो मन्दिरमा रमाउँछ। भक्तिले युक्त भएको जसले मेरो अङ्गपूजा गर्नेछ, त्यो स्वयंप्रभ देशमा उत्पत्ति हुन्छ। जो भक्ति भएकोले मेरो अङ्गको प्रदक्षिणा गर्छ, त्यो राम्रो, धनी, वज्र लाग्दा पनि केही नमान्ने, तन्नेरी, विद्यावान् र संसारमा छोरा नातिहरू भएको हुन्छ। जतनसाथ भक्तिले जसले मेरो अङ्गपूजा गर्छ, त्यो राजा आयु भएको, बल भएको र वीर हुन्छ। जसले भक्तिपूर्वक मेरो भवनमा दीपमाला गर्छ, त्यो खूब आँखा देख्ने र लोकले पूजिएको तेजस्वी हुन्छ ।७१-७६॥

भक्ति भएको जसले मेरो अगाडि गुग्गुल हाल्छ, त्यो यस लोकमा सुख भोगेर अन्तमा उत्तम गतिमा पुग्छ। तिलपात्र दिनाले ठूलो डरबाट रक्षा गरिन्छ। त्यस्तै नै सुन र तिलधेनु दिनाले पनि हुन्छ। सुनको सिङ भएको, चाँदीको खुर भएकी, काँसको घण्टा लाएकी र बाच्छो भएकी कपिला देओस्। त्यसको त यज्ञको फल हुन्छ। रत्नको कञ्चुक दिनाले राजा रत्नवान् हुन्छ। वस्त्र दिनाले वस्त्रवान् र भूमि दिनाले भूमिवान् हुन्छ। तूर्यको शब्दले राम्रो भएको नाच, गान गर्नाले मेरो पार्श्वचर भएर दुःख नभएको हुन्छ। नीलकमल, आँक र कमल दिनाले श्री पाउँछ। गुमपाती र वेलपत्र दिनाले मैले विशेष वर प्रदान गर्दछु। धतूरो दिनाले मोक्ष हुन्छ। करवीरले धनी र जाई आदि सुगन्धित फूलले शुभग हुन्छ। फूलपाती, फल र जलले सधैं मलाई पूजा गर्छ भने त्यो पनि स्वर्गको फल पाएर आनन्दसँग रहन्छ, यसमा शङ्का छैन। जसले मेरो प्यारो पशुयोनिलाई भक्तिपूर्वक पूजा गर्छ, त्यो सबै पापबाट छुट्छ र इच्छा गरेको वस्तुको सिद्धि पनि प्राप्त गर्छ। जसले यो मेरो क्षेत्रमा ब्राह्मणहरूलाई भोजन दिन्छ, त्यो पनि यज्ञको फल पाएर स्वर्गलोकमा पुग्नेछ ॥७७-८५॥

स्कन्दपुराण अन्तर्गत हिमवतखण्डमा नेपालमाहात्म्यको चौधौं अध्याय पूर्ण भयो।

## अथ पञ्चदशोऽध्यायः

कुम्भेश्वरशिवलिङ्गस्याविर्भावः (कुम्भेश्वर शिवलिङ्गको आविर्भाव)

मार्कण्डेय उवाच

ततः पशुपतिर्देवः पुनः प्रोवाच शीतगुम्। क्रियतां चन्द्र मे पूजां यथाभक्तिपुरःसरम् ॥१॥

महादेव उवाच

स्थापयित्वा हि मल्लिङ्गं मत्क्षेत्रेऽत्यन्तदुर्लभे। सर्वपापविशुद्धः सन् कृतार्थस्त्वं भविष्यसि ॥२॥

पूर्वस्यां कौशिकी पुण्या सर्वपापविनाशिनी। गङ्गा त्रिशूलगङ्गाख्या प्रतीच्यां दिशि संस्थिता ॥३॥
उत्तरस्यां दिशि तथा सीमा शिवपुरी मता। दक्षिणस्यां दिशि नदी पवित्रा शीतलोदका ॥४॥
एतन्मध्ये महापुण्यं नेपालं क्षेत्रमीरितम्। मनोहराया वाग्वत्याः सङ्गमे सुमनोहरे ॥५॥
तपस्यन्तं महाभागं गच्छ त्वं कुम्भसम्भवम्। तदुक्तेनैव विधिना स्वात्माभिलषिते स्थले ॥६॥
लिङ्गं स्थापय चन्द्र त्वं द्विजराजो भविष्यसि। इत्युक्त्वाऽन्तर्दधे शम्भुश्चन्द्रमा हर्षसंयुतः ॥७॥
नत्वा देवं पशुपतिं शङ्खमूलं जगाम हि। ततो ददर्श रुचिरमाश्रमं कुम्भजन्मनः ॥८॥
दाडिमैः कर्णिकारैश्च चम्पकैरुपशोभितम्। पनसैः सहकारैश्च नागरङ्गैर्विराजितम् ॥९॥
जम्बीरैर्बीजपूरैश्च खर्जूरैः प्रविराजितम्। जातीलवङ्गलतिकामालतीमल्लिकायुतम् ॥१०॥
भ्रमद्भ्रमरसङ्घातनिनादैश्च मनोहरम्। वाग्वतीजलसंसर्गशीतलानिलबीजितम् ॥११॥
नानापक्षिनिनादेन कोकिलानां रवेण च। भ्रमतां तत्र लोकानां मनसस्तापहारिणाम् ॥१२॥
प्रविवेश तदा चन्द्रस्तपोवनमनुत्तमम्। विशुद्धं चन्द्रमालोक्य भगवान् कुम्भसम्भवः ॥१३॥
स्वागतेन प्रजग्राह महाहर्षसमन्वितः। द्विजराजं मुनिश्रेष्ठः कृतासनपरिग्रहम् ॥१४॥

अगस्त्य उवाच

तेजः पुञ्जमयं दृष्ट्वा पप्रच्छ प्रीतिपूर्वकम्। यदादिदेश भगवान् स्वयं पशुपतिः प्रभुः ॥१५॥
शशलाञ्छन तत् सर्वं वद यत् पुरतो मम। अगस्त्यस्य वचः श्रुत्वा द्विजराजोऽब्रवीत् पुनः ॥१६॥

चन्द्र उवाच

तव प्रसादाद्विप्रेन्द्र पूतोऽस्मि गुरुतल्पगः। दृष्टः पशुपतिर्देवो भोगस्वर्गापवर्गदः ॥१७॥
आज्ञप्तं देवदेवेन लिङ्गसंस्थापनं स्वयम्। नेपाले परमे क्षेत्रे देवानामपि दुर्लभे ॥१८॥
भवन्मुखबहिर्यातमन्त्रादिविधिना प्रभो। आज्ञप्तानि च तीर्थानि मुख्यानि द्विजपुङ्गव ॥१९॥
पूजाविधिश्च कथितो ममानुग्रहकारणात्। अतो भवन्तमायातो देवाज्ञातो मुनीश्वर ॥२०॥
उत्तिष्ठ मुनिशार्दूल यामः पशुपतिं वयम्। पूजयित्वा पशुपतिं भक्त्या विधिपुरःसरम् ॥२१॥
तीर्थयात्रा प्रकर्तव्या भवता सह यत्नतः। आत्माभिलषिते स्थाने लिङ्गसंस्थापनं मया ॥२२॥

मार्कण्डेय उवाच

कर्तव्यं मुनिशार्दूल भवदुक्तविधानतः। इति चन्द्रवचः श्रुत्वाऽगस्त्यः प्रोवाच तं पुनः ॥२३॥

अगस्त्य उवाच

अवश्यमेव कर्तव्या पूजा पशुपतेर्मया। तीर्थयात्रा प्रकर्तव्या मया सह कलानिधे ॥२४॥
आत्माभिलषिते स्थाने लिङ्गं संस्थापय द्रुतम्। मयाऽप्यत्रैव कर्तव्यं लिङ्गसंस्थापनं विधो ॥२५॥
इत्युक्त्वा द्विजराजं तं स मुनिः कुम्भसम्भवः। लिङ्गसंस्थापनमतिं कृत्वा चन्द्रमभाषत ॥२६॥
क्रियतां होमसामग्री नेपालस्था मुनीश्वराः। आहूयन्तां हिमकर लिङ्गसंस्थापनोत्सवे ॥२७॥
चन्द्राज्ञातः समायाता नेपालस्य मुनीश्वराः। मुनिभिः सहितः श्रीमानगस्त्यो मुनिसत्तमः ॥२८॥
सङ्गमस्याविदूरे तु सुस्थले सुमनोहरे। शुभे दिने सुलग्ने तु यज्ञशालां चकार सः ॥२९॥
हरमाराध्य विधिवद् भक्तियुक्तो मुनीश्वरः। कोटिहोमसमाप्त्यर्थं दत्त्वा दानान्यनेकशः ॥३०॥
चखान कुण्डं मनुना वारुणेन घटोद्भवः। पातालान्निःसृतं तोयं कुण्डे स्थास्यति सर्वदा ॥३१॥
ततः संस्थापयामास लिङ्गं कुम्भेश्वराभिधम्। कुम्भेश्वरस्य ये भक्ता भविष्यन्ति नराः कलौ ॥३२॥
इह लोके सुखं भुक्त्वा यास्यन्ति परमां गतिम्। कुम्भोद्भवेन मुनिना तपस्तप्त्वा सुदारुणम् ॥३३॥
समाराध्य हरं यस्माल्लिङ्गसंस्थापनं कृतम्। अतः कुम्भेश्वरं नाम प्रवदन्ति मनीषिणः ॥३४॥
चतुर्दश्यामथाष्टम्यां सङ्क्रान्तिदिवसे तथा। कुम्भेश्वरं ये द्रक्ष्यन्ति ते कृतार्था न संशयः ॥३५॥
प्रातः स्नात्वा नरः कुण्डे दृष्ट्वा कुम्भेश्वरं शिवम्। कुरुते शक्तितो दानं स कृतार्थो न संशयः ॥३६॥
समर्चयति विल्वस्य पत्रैः कुम्भेश्वराभिधम्। तस्य कुम्भेश्वरस्तुष्टः प्रददाति मनोरथान् ॥३७॥
तत्पुष्करिण्याः सलिले यः करोत्यवगाहनम्। श्रावणे पौर्णमास्यां वै सोऽपि स्वर्गमवाप्नुयात् ॥३८॥

वैशाखे पूर्णिमास्यां तु यो नरो भक्तिसंयुतः। कुम्भेश्वरं स्नापयति शीतलेन सुगन्धिना ॥३९॥
वारिणा रुद्रसूक्तैस्तु तस्य पुण्यफलं शृणु। कपिलानां सहस्रस्य दानाद्यज्जायते फलम् ॥४०॥
तत् फलं समवाप्नोति नात्र कार्या विचारणा। तौर्यत्रिकं कारयति यः कुम्भेश्वरसन्निधौ ॥४१॥
अत्र भुक्त्वा महाभोगानन्ते याति परां गतिम्। नरो भूतचतुर्दश्यां कार्तिके भक्तिसंयुतः ॥४२॥
दीपमालां कारयति यः कुम्भेश्वरसन्निधौ। महादेवप्रसादेन यमलोकं न पश्यति ॥४३॥
यत्तीर्थोद्भववारिणा सुनियतं स्नात्वा नरो नित्यशः
पीत्वा वारि सुनिर्मलं किमथ वा कृत्वा मुखक्षालनम्।
पुण्यं योऽप्यभिनन्दते प्रतिदिनं श्रीदेवकुम्भेश्वरं
भुक्त्वा सर्वसुखानि याति नगरीं सोऽन्ते पुरीं शाम्भवीम् ॥४४॥
श्रुत्वाऽध्यायमिमं पुण्यं महापातकनाशनम्। मुच्यते सर्वपापेभ्यः कुम्भेश्वरसमुद्भवम् ॥४५॥
वेदान्तवेत्ता विप्रः स्यात् क्षत्रियो विजयी भवेत्। वैश्यो धनसमृद्धः स्याच्छूद्रः सद्गतिमाप्नुयात् ॥४६॥
कन्यार्थी लभते कन्यां धनार्थी लभते धनम्। विद्यार्थी लभते विद्यामपुत्रः पुत्रमाप्नुयात् ॥४७॥
गुर्विणी जनयेत् पुत्रं श्रुत्वा ध्यानमिमं शुभम्। पतिकामनया कन्या श्रुत्वा विन्दति सत्पतिम् ॥४८॥
इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये कुम्भेश्वरोत्पत्तिर्नाम पञ्चदशोऽध्यायः ॥१५॥

---

मार्कण्डेयले भन्नुभयो – त्यसपछि पशुपतिदेवले फेरि चन्द्रमालाई भक्तिपूर्वक मेरो पूजा गर भन्नुभयो ॥१॥

महादेवले भन्नुभयो – हे चन्द्रमा ! पाइ नसक्नु मेरो क्षेत्रमा लिङ्ग स्थापना गरेर नै सबै पापबाट मुक्त भई कृतार्थ हुनेछौ। पूर्वमा सबै पाप नाश गर्ने पुण्य कौशिकी गङ्गा पश्चिम दिशामा रहेको त्रिशूली गङ्गाको उत्तरपट्टिको सीमा शिवपुरी भनेर मानियो। दक्षिण दिशामा पवित्र शीतलोदका नदी यस बीचमा मनोहरा र वाग्वतीको रमाइलो सङ्गममा रहेको यो ज्यादै पवित्र नेपालक्षेत्र भनेर बताइयो। तपस्या गर्ने महाभाग – तिमी कुम्भसम्भव अगस्त्य भएको ठाउँमा जाऊ। उनले भने अनुसारको विधिले आफूलाई मन परेको थलोमा लिङ्गको स्थापना गर। हे चन्द्रमा ! तिमी द्विजराज हौ। यति भनेर शम्भु अन्तर्ध्यान हुनुभयो। हर्षले युक्त चन्द्रमा देवाधिदेव पशुपतिलाई नमस्कार गरी शङ्खमूल गए र त्यहाँ अगस्त्यको राम्रो आश्रम देखे ॥२–८॥

दाडिम, काठे र चाँपहरूले शोभित भएको, कटहर, मीठा आँप, सुन्तलाहरू भएको ज्यामिर, बिबिरो, खजूरहरू भएको, जाई, ल्वाङका लहरा, चमेली, बेलीहरू भएको, घुमेका भमराहरूको आवाजले मनै हर्ने,वाग्वतीको पानीको संसर्गले गर्दा चीसो भएको हावाले हल्लाइएको, कोइलीहरूको र विभिन्न पक्षीहरूको मधुर ध्वनिले त्यहाँ घुम्ने मान्छेहरूका मनको ताप हर्ने उत्तम तपोवनमा चन्द्रमा पसे। शुद्ध चन्द्रमालाई देखेर ठूलो हर्ष मानेका भगवान् अगस्त्यले स्वागत गरे। श्रेष्ठ मुनिले आसन लिएका तेजपुञ्जमय द्विजराजलाई देखेर प्रेमपूर्वक सोधे। भगवान् पशुपतिले आफैंले जुन आज्ञा गर्नु भएको छ, त्यो सबै मेरा अगाडि भन्नुहोस्। अगस्त्यको कुरो सुनेर द्विजराजले फेरि भने ॥९–१६॥

चन्द्रमाले भने – हे श्रेष्ठ ब्राह्मण ! तपाईंको दयाबाट गुरुको पत्नी राखेको पाप बोकेको म पवित्र भएको छु, भोग, स्वर्ग र मोक्ष दिने पशुपतिदेवलाई पनि देखेँ। हे प्रभु ! देवताहरूका लागि पनि दुर्लभ उत्तम नेपालक्षेत्रमा तपाईंको मुखबाट बाहिर आएको मन्त्रादि विधिले आफैं लिङ्ग स्थापना गर्नू भनी देवताका पनि देवताले आज्ञा गरिएको छु। हे श्रेष्ठ ब्राह्मण ! मेरो दयाले गर्दा मुख्य तीर्थहरू पनि आज्ञा गरिए र पूजाविधि पनि भनियो। यसै कारणले मुनीश्वर ! देवताको आज्ञाबाट तपाईं भएको ठाउँमा आएको हुँ। श्रेष्ठ मुनि ! उठ्नुहोस्, हामीहरू पशुपतिमा जाऔं। विधिपूर्वक पशुपतिलाई पूजा गरी जतनसाथ तपाईंसँग मैले तीर्थयात्रा गर्नुपर्छ। हे श्रेष्ठ मुनि ! तपाईंले भने अनुसारको विधिले इच्छा लागेको ठाउँमा मैले लिङ्ग स्थापना गर्नुपर्छ ॥१७–२२॥

मार्कण्डेयले भन्नुभयो – यस्तो चन्द्रमाको बोली सुनेर अगस्त्यले फेरि तिनलाई भन्नलागे ॥२३॥

अगस्त्यले भने – मैले अवश्य नै पशुपतिको पूजा गर्नुपर्छ। मसँग तीर्थयात्रा गर्नुपर्छ। आफूलाई इच्छा लागेको ठाउँमा चाँडै लिङ्ग स्थापना गर, हे चन्द्रमा ! मैले पनि यहीं लिङ्ग स्थापना गर्नु छ। ती चन्द्रमालाई उनै अगस्त्य मुनिले यति भनी लिङ्ग स्थापना गर्ने विचार गरी चन्द्रमालाई भने। हे चन्द्रमा ! होमसामग्री बनाऊ र नेपालमा रहेका श्रेष्ठ मुनिहरू लिङ्ग स्थापना गर्ने उत्सवमा बोलाइयून्। चन्द्रमाको आज्ञाले नेपालमा रहेका मुनीश्वर आए। मुनिहरूले युक्त श्रीमान् अगस्त्य मुनिले सङ्गमको नजिकै राम्रो स्थलमा शुभ दिनमा सुलग्नमा यज्ञशाला बनाए। भक्तिले युक्त भएका मुनीश्वरले शिवलाई आराधना गरी

कोटिहोम समाप्तिका लागि अनेकौं दान दिई वरुणद्वारा अगस्त्यले ठूलो खण्ड खने। पातालबाट निस्केको पानी सधैं त्यस कुण्डमा रहनेछ ॥२४-३१॥

त्यसपछि कुम्भेश्वर नामको लिङ्गको स्थापना गरे। जो मानिसहरू कलियुगमा कुम्भेश्वरका भक्त हुनेछन् र ती यस लोकमा सुख भोगेर परम गतिमा जानेछन्। कुम्भबाट जन्मेका मुनिले कठोर तपस्या गरी शिवको आराधना गरेर लिङ्ग स्थापना गरेको हुनाले बुद्धिमान्हरू कुम्भेश्वर भन्छन्। चतुर्दशी, अष्टमी र सङ्क्रान्तिको दिनमा कुम्भेश्वरलाई जसले हेर्छन्, निश्चय ती कृतार्थ हुन्। मानिसले बिहानै कुण्डमा नुहाएर कुम्भेश्वरलाई हेरी शक्तिअनुसारको दान गर्छ भने निश्चय त्यो कृतार्थ हो। बेलपत्रले कुम्भेश्वरको पूजा गर्छ भने खुसी भएका कुम्भेश्वरले त्यसलाई इच्छा लागेको वस्तु दिनुहुन्छ। त्यस पोखरीको जलमा श्रावण पूर्णिमामा जसले नुहाउँछ, त्यसले पनि स्वर्ग पाउँछ ॥३२-३८॥

वैशाख पूर्णिमामा भक्तिले युक्त भएको जो मानिसले रुद्रसूक्तसहित सुगन्धित शीतल जलले कुम्भेश्वरलाई नुहाउँछ, त्यसको पुण्यफल सुन्नुहोस्। हजार कपिला दान गर्नाले जुन फल हुन्छ, त्यही फल पाउँछ। यसमा सोच्नै पर्दैन। जसले कुम्भेश्वरको नजिकमा नाच, गान, बजान गराउँदछ, त्यो यस लोकमा ठूलो भोगहरूभोग गरी अन्तमा श्रेष्ठ गतिमा पुग्छ। भक्तिले युक्त भएको जुन मानिसको कार्तिक भूतचतुर्दशीमा कुम्भेश्वरको नजिकमा दीपमाला गर्छ, त्यसले महादेवको प्रसादले गर्दा यमलोक नै देख्दैन। जुन तीर्थबाट निस्केको पानीद्वारा सधैं बेलामा नुहाएर अथवा मुख धोएर निर्मल पानी पिई जो मानिस दिनदिनै पवित्र कुम्भेश्वरलाई प्रार्थना गर्छ, त्यो सबै सुख भोगेर अन्तमा शिवको पुरीमा जान्छ। यो महापाप नाश गर्ने कुम्भेश्वर उत्पन्न भएको पवित्र कथा सुनेर सबै पापबाट छुट्छ। ब्राह्मण वेदान्तवेत्ता हुन्छ, क्षत्रिय विजयी हुन्छ, वैश्य धनै धन भएको हुन्छ र शूद्रले असल गति पाउँछ। कन्या चाहनेले कन्या पाउँछ, धन खोज्नेले धन पाउँछ, विद्यार्थीले विद्या पाउँछ र छोरो नहुनेले छोरो पाउँछ। यो शुभ अध्याय सुनेर गर्भिणी स्त्रीले छोरो जन्माउँछे भने पति चाहने केटीले असल पति वरण गर्छे ॥३९-४८॥

स्कन्दपुराण अन्तर्गत हिमवत्खण्डको नेपाल माहात्म्यमा कुम्भेश्वरको उत्पत्तिनामक पन्ध्रौं अध्याय पूर्ण भयो।

## अथ षोडशोऽध्यायः

विश्रवसो जन्म (विश्रवाको जन्मकथा)

मार्कण्डेय उवाच

ततोऽगस्त्यप्रभृतिर्मुनिभिः सह चन्द्रमाः। जगाम हर्षसंयुक्तो देवं पशुपतीश्वरम् ॥१॥
ततोऽनुज्ञां प्रार्थयित्वा विधुः पशुपतीश्वरात्। राजराजेश्वरीं द्रष्टुं जगामागस्त्यसंयुतः ॥२॥
पूजयित्वा यथान्यायं राजराजेश्वरीं शिवाम्। दृष्ट्वा महाद्भुतं कूपं सूचकं भाविजन्मनः ॥३॥
दृष्ट्वाऽथ भैरवं देवं वत्सलां प्रविलोक्य च। स्तनकुण्डं पशुकुण्डं वीक्ष्य गुह्येश्वरीं गतः ॥४॥
गुह्येश्वरीं पूजयित्वा महाविभवविस्तरैः। दृष्ट्वा तीर्थान्यनेकानि कुम्भसम्भवसंयुतः ॥५॥
गोकर्णेशं महालिङ्गं ययौ मुनिगणैर्वृतः ॥६॥
यज्ञभूमिं समालोक्य मुनीन् प्राह घटोद्भवः। अत्रैव रावणस्तेपे तपः परमदारुणम् ॥७॥
अत्राजुहाव पौलस्त्यो यज्ञं परमदुष्करम्। तपस्यया स पौलस्त्यो लङ्कास्थानमनुत्तमम् ॥८॥
लेभे चक्रे वशे देवान् राक्षसानामधीश्वरः। गोकर्णेशप्रसादेन त्रैलोक्ये दुर्जयोऽभवत् ॥९॥
अगस्त्यस्य वचः श्रुत्वा मुनीनामग्रतस्तदा। भृगुवंशसमुत्पन्नः श्यामो नाम तपोधनः ॥१०॥
मुदा परमया युक्तः पप्रच्छ घटसम्भवम्।

श्याम उवाच

रावणस्य कुलं जन्म तपस्यां विक्रमं तथा ॥११॥
श्रोतुमिच्छाम्यशेषेण वद सर्वं तपोनिधे। एतत् तु वचनं श्रुत्वा भार्गवस्य महात्मनः ॥१२॥

अगस्त्य उवाच

कुम्भयोनिर्महातेजा वाक्यमेतदुवाच ह। शृणु श्याम यथा वृत्तं तस्य तेजो बलं महत् ॥१३॥
जघान च रिपून् यस्तु यथाऽवध्यश्च शत्रुभिः। आह ते रावणस्येदं कुलं जन्म च भार्गव ॥१४॥
वरप्रदानं च यथा तथा सर्वं ब्रवीमि ते। पुरा कृतयुगे श्याम प्रजापतिसुतः शुभः ॥१५॥

पुलस्त्यो नाम विप्रर्षिः साक्षादिव हुताशनः। नामकीर्त्या गुणात् तस्य धर्मतः शीलतस्तथा ॥१६॥
प्रजापतेः सुत इति शक्यं ज्ञातुमतः परम्। स तु धर्मप्रसादेन मेरोः पार्श्वे महागिरेः ॥१७॥
तृणविन्द्वाश्रमं गत्वाऽन्यवसन्मुनिपुङ्गवः। कुर्वतस्तस्य हि तपः स्वाध्यायनिरतात्मनः ॥१८॥
गत्वाऽऽश्रमपदं रम्यं विघ्नं कन्याः प्रकुर्वते। तत्र पन्नगकन्याश्च राजर्षितनयाश्च याः ॥१९॥
क्रीडन्त्योऽप्सरसश्चैव तं देशमुपपेदिरे। नित्यशस्तं प्रदेशं तु गत्वा क्रीडन्ति कन्यकाः ॥२०॥
देशस्य रमणीयत्वात् पुलस्त्यो यत्र स द्विजः। अथ क्रुद्धो महातेजा व्याजहार महामुनिः ॥२१॥
यो मे दर्शनमागच्छेत् सा गर्भं धारयेदिति। तास्तु सर्वाः प्रतिगताः श्रुत्वा वाक्यं महात्मनः ॥२२॥
ब्रह्मशापभयाद्भीता न तं देशं सिषेविरे। तृणविन्दोस्तु राजर्षेर्दुहिता न तथाऽशृणोत् ॥२३॥
गत्वाऽऽश्रमपदं तस्य सा चचार सुनिर्भया। तस्मिन्नेव तु काले तु प्राजापत्यो महामुनिः ॥२४॥
स्वाध्यायमकरोत् तत्र तपसा द्योतितप्रभः। तस्य वेदध्वनिं श्रुत्वा दृष्ट्वा तं च तपोधनम् ॥२५॥
अभवत् पाण्डुदेहा सा सुव्यञ्जितशरीरजा। बभूव सहसोद्विग्ना दृष्ट्वा तद्रूपमात्मनः ॥२६॥
इदं किं तदिति ज्ञात्वा पितुर्गत्वाऽऽश्रमं स्थिता। तां दृष्ट्वा तु तथाभूतां तृणविन्दुरथाब्रवीत् ॥२७॥
किमेतदीदृशं रूपं धारयस्यात्मनो वपुः। साऽथ कृत्वाऽञ्जलिं दीना कन्योवाच तपोधनम् ॥२८॥
न जाने कारणं तात येन मे रूपमीदृशम्। किं तु पूर्वं गताऽस्म्येका महर्षेर्भावितात्मनः ॥२९॥
पुलस्त्यस्याश्रमपदमन्वेष्टुं स्वसखीजनम्। न चापश्यमहं तत्र कां चिदप्यागतां सखीम् ॥३०॥
रूपस्य तु विपर्यासं लब्ध्वैवाहमिहागता। तृणविन्दुस्तु राजर्षिस्तपसा भावितः स्वयम् ॥३१॥
ध्यानं विवेश तच्चापि ददर्श मुनिशापजम्। स तु विज्ञाय तं शापं महर्षेर्भावितात्मनः ॥३२॥
तनयासहितो गत्वा पुलस्त्यमिदमब्रवीत्। भगवँस्तनया त्वं मे गुणैः स्वैरेव भूषिताम् ॥३३॥
भिक्षां प्रतिगृहाणेमां मया ते प्रतिपादिताम्। तपश्चरणखिन्नस्य श्राम्यमाणक्रियस्य ते ॥३४॥
शुश्रूषातत्परा नित्यं भविष्यति न संशयः। एवं ब्रुवाणं तं चैव राजर्षिं धार्मिकं तदा ॥३५॥
प्रतिगृह्याब्रवीत् कन्यां वाढमित्येव स द्विजः। दत्वाऽथ स गतः कन्यां स्वमाश्रमपदं नृपः ॥३६॥
साऽपि तत्रावसत् साध्वी तोषयन्ती पतिं गुणै। तस्याश्च शीलवृत्ताभ्यां तुतोष मुनिपुङ्गवः ॥३७॥
प्रीतः स तु महातेजा वाक्यमेतदुवाच ह। परितुष्टोऽस्मि ते भद्रे गुणानां सम्पदा भृशम् ॥३८॥
तुष्टश्च वितराम्यद्य पुत्रमात्मसमं तव। उभयोर्वंशकर्तारं पौलस्त्येयमिति श्रुतम् ॥३९॥
यस्मात् तु विश्रुता वेदास्त्वयैवाभ्यस्यतो मम। तस्मात् स विश्रवा नाम भविष्यति न संशयः ॥४०॥
एवमुक्त्वा तु सा कन्या प्रहृष्टेनान्तरात्मना। अचिरेणैव कालेन प्राप्तं विश्रवनामकम् ॥४१॥
स तु लोकत्रये ज्ञातः शौचकर्मसमन्वितः। बुद्धिमान् समदर्शी च व्रताचाररुचिस्तथा ॥४२॥
सत्यवाक्यः कृतज्ञश्च द्युतिमान् धृतिमान् वशी। पितेव तपसा युक्तो विश्रवा मुनिपुङ्गवः ॥४३॥

इति श्रीस्कन्दपुराणे हिमवतखण्डे नेपालमाहात्म्ये षोडशोऽध्यायः ॥१६॥

---

मार्कण्डेयले भन्नुभयो – त्यसपछि अगस्त्य आदि मुनिहरूसँग हर्षले युक्त भएका चन्द्रमा पशुपतिनाथ कहाँ गए। अनि पशुपतिनाथबाट आज्ञा मागेर अगस्त्ययुक्त चन्द्रमा राजराजेश्वरीको दर्शन गर्न गए। विधिपूर्वक शिवा राजराजेश्वरीको पूजा गरेर पछिल्लो जन्मको सूचना गर्ने ठूलो अद्भुत कुवा हेरेर भैरवदेव हेरी वत्सला स्नानकुण्ड र पशुकुण्ड पनि हेरी गुह्येश्वरीमा गए। धेरै सम्पत्तिले गुह्येश्वरीको पूजा गरेर अनेकौं तीर्थहरू हेरी अगस्त्यले युक्त भएका र मुनिहरूले घेरिएका चन्द्रमा गोकर्णेश महालिङ्गमा गए। यहीं नै रावणले कठोर तपस्या गरेका थिए। यहाँ पुलस्त्यको छोराले ज्यादै मुश्किलले गरिने यज्ञ गरे ती पौलस्त्यले तपस्याले गर्दा उत्तम लङ्का पाए। राक्षसका मालिक तिनले सबै देवताहरूलाई वश गरे, गोकर्णको प्रसादले तीनै लोकमा जित्न नसकिने भए ॥१–९॥

अगस्त्यको कुरा सुनेर भृगुवंशमा उत्पन्न भएका श्याम नाम गरेका तपस्वीले खूब हर्षसाथ मुनिहरूका अगाडि अगस्त्यलाई सोधे – हे तपस्वी ! रावणको कुल, जन्म, तपस्या र पराक्रम सारा सुन्न चाहन्छु, सबै भन्नुहोस् ॥१०½॥

मार्कण्डेयले भन्नुभयो – महात्मा श्यामको यो बोली सुनेर ठूलो तेज भएका अगस्त्यले यो कुरो भने ॥११–१२½॥

अगस्त्यले भने – सुन्नुहोस्, श्याम ! जसरी तिनको तेजोबल ठूलो भयो, जसले शत्रुहरूलाई मारे र जो शत्रुहरूले मार्न

नसकिने भए। तिनको चरित्र तपाईंलाई भन्छु। त्यस्तै हे श्याम ! रावणको कुल, जन्म र वर जसरी दिइयो, त्यो सबै तपाईंलाई भन्दछु। हे श्याम ! पहिल्यै सत्य युगमा प्रजापतिका छोरा पुलस्त्य नामका असल ब्रह्मर्षि साक्षात् हुताशन अग्नि जस्ता थिए। तिनको नामले गुणले धर्मले र शीलले गर्दा तिनलाई प्रजापतिका छोरा भन्न सकिन्थ्यो। ती मुनि धर्मले गर्दा पर्वतको बगलमा रहेको तृणविन्दुको आश्रममा गएर बसे ॥१३-१७½॥

स्वाध्यायमा आफूलाई मग्न बनाएर तपस्या गर्ने तिनको राम्रो आश्रममा केटीहरू गएर विघ्न गर्दथे। नागकन्याहरू र राजर्षिका छोरीहरू त्यस ठाउँमा खेलवाड गर्दथे। अप्सराहरू पनि त्यस ठाउँमा पुग्थे। ठाउँको रमणीयताले गर्दा पुलस्त्य ब्राह्मण जहाँ छन्, त्यसै ठाउँमा सधैं जसो गएर केटीहरू खेलवाड गर्छन्। यसपछि रिसाएका तेजस्वी मुनिले जो मेरा आँखा अगाडि आउँछ, त्यसले पेट बोकोस् भने। महात्माको बोली सुनेर ती सबै गए। ब्राह्मणको सरापले डराएर त्यस ठाउँमा आएनन्। तृणविन्दु राजर्षिकी छोरीले त त्यस्तो सुनिनन् अनि डरै नमानेकी ती आश्रममा गएर घुमिन्। त्यसै बेलामा तपस्याले गर्दा चम्किलो कान्ति भएका प्रजापतिका छोरा महामुनिले स्वाध्याय गरे। तिनको वेदको ध्वनि सुनेर ती तपोधनलाई हेरेपछि तिनी गर्भधारण गरेको लक्षणकी र फुस्रो वर्णका शरीर भएकी भइन्। आफ्नो त्यो रूप देखी यो के भयो नि भनेर दिक्क भई बाबुकहाँ गएर आश्रममा रहिन् ॥१८-२६½॥

त्यस्ती भएकी तिनलाई देखेर तृणविन्दुले भने – किन यस्तो रूप भएको आफ्नो शरीर लिएकी छ्यौ ? अनि हात जोडेर दुःखी भएकी ती कन्याले तपोधनलाई भनिन् – बुबा ! केले गर्दा मेरो रूप यस्तो भयो ? म जान्दिनँ। तर आफ्ना सहेलीहरूलाई खोज्नका निम्ति आत्मज्ञानी महर्षि पुलस्त्यको आश्रम अगाडि गएकी थिएँ। मैले त्यहाँ कुनै पनि सङ्गिनीहरूलाई देखिनँ,रूप फरक परेको पाउनासाथै यहाँ आएँ। तपस्वी तृणविन्दु राजर्षि आफैंले ध्यानबाट मुनिको सरापबाट यस्तो भएको भन्ने बुझे ॥२७-२८½॥

आत्मज्ञानी महर्षिको सरापबाट यस्तो भएको तिनले थाहा पाएर छोरीसहित गएर पुलस्त्यलाई यस्तो भने- हे भगवान् ! आफ्ना गुणहरूले सिङ्गारिएकी मैले तपाईंलाई दिइएकी यी मेरी छोरीलाई भिक्षा लिनुहोस्। तपस्या गरेर खिन्न हुनुभएको र कामले थाकेको तपाईंको सधैं सेवामा तत्पर भएकी निश्चय नै हुनेछिन्। यस्तो भन्ने धार्मिक ती राजर्षिलाई ब्राह्मणले कन्या लिएर हुन्छ भने। छोरी दिएर ती राजा आफ्नो आश्रममा गए। ती पतिव्रता पनि गुणहरूले पतिलाई खुसी गराएर बसिन्। तिनको शील स्वभाव र आचरणले मुनि खुसी भए ॥२९-३७॥

खुसी भएका तेजस्वी तिनले यस्तो कुरो भने – हे भद्रे ! प्रशस्त गुणहरूले गर्दा अत्यन्त खुसी भएको छु। खुसी भएको म हामी दुबैको कुल बनाउने पौलस्त्येय भनिने आफैं जस्तो छोरो दिन्छु। अभ्यास गर्ने भएको मबाट तिमीले वेदहरू सुनेकी हुनाले निश्चय नै त्यो विश्रवा नाम गरेको हुनेछ। खुसी आत्माले यति भनेपछि त ती कन्याले चाँडै नै विश्रवा नामको छोरो पाइन्। ती मुनि विश्रवा तीनै लोकमा प्रसिद्ध, पवित्र कर्महरूले युक्त, बुद्धिमान्, समदर्शी, व्रत लिनमा रुचि भएका, साँचो बोल्ने, कृतज्ञ, कान्ति भएका, धैर्य भएका, इन्द्रिय वशमा राखेका, बाबु झैं नै तपस्यामा लाग्ने भए ॥३८-४३॥

यसरी स्कन्दपुराण अन्तर्गत हिमवतखण्डमा नेपालमाहात्म्यको सोह्रौं अध्याय पूर्ण भयो।

# अथ सप्तदशोऽध्यायः

सुदेशाय वरप्रदानम् (सुदेशलाई वरप्रदान)

अगस्त्य उवाच

अथ पुत्रः पुलस्त्यस्य विश्रवा मुनिपुङ्गवः। अचिरेणैव कालेन पितेव तपसि स्थितः ॥१॥
सत्यवाक् शीलवाग्दक्षः स्वाध्यायनिरतः शुचिः। सर्वभोगेष्वसंसक्तो नित्यधर्मपरायणः ॥२॥
ज्ञात्वा च तस्य तद्वृत्तं भरद्वाजो महामुनिः। ददौ विश्रवसे भार्यां स्वसुतां वरवर्णिनीम् ॥३॥
प्रतिगृह्य तु धर्मेण भरद्वाजसुतां तदा। मुदा परमया युक्तो विश्रवा मुनिपुङ्गवः ॥४॥
स तस्यां वीर्यसम्पन्नमपत्यं परमाद्भुतम्। जनयामास धर्मज्ञं सर्वैरात्मगुणैर्युतम् ॥५॥
तस्मिन् जाते सम्बभूव सन्तुष्टः स पितामहः। नाम चास्याकरोत् प्रीत्या सर्वदेवर्षिभिस्तथा ॥६॥
यस्माद्विश्रवसोऽपत्यं सादृश्याद्विश्रवा इव। तस्माद्वैश्रवणो नाम भविष्यत्येष विश्रुतः ॥७॥
स तु वैश्रवणस्तस्य तपोवनगतस्तदा। अवर्धताहुतिहुतो महातेजा यथाऽनलः ॥८॥
तथाऽऽश्रमपदस्थस्य बुद्धिर्जज्ञे महात्मनः। चरिष्यामि यतो धर्मं धर्मो हि परमा गतिः ॥९॥

ततो वर्षसहस्राणि तपस्तेपे चतुर्दश। पूर्णे पूर्णे सहस्रे च तां तां वृत्तिमुपस्थितः ॥१०॥
जलाशी मारुताहारो निराहारस्तथैव च। एवं वर्षसहस्राणि गतान्यस्यैकवर्षवत् ॥११॥
अथ प्रीतो महातेजाः सेन्द्रैः सुरगणैः सह। गत्वाऽऽश्रमपदं तस्य ब्रह्मेदं वाक्यमब्रवीत् ॥१२॥
परितुष्टोऽस्मि ते वत्स कर्मणाऽनेन सुव्रत। वरं वृणीष्व भद्रं ते वरार्हस्त्वं हि मे मतः ॥१३॥
अथाब्रवीद्वैश्रवणः पितामहमुपस्थितम्। भगवन् लोकपालत्वमिच्छेयं वित्तरक्षणम् ॥१४॥
तत्राब्रवीद्वैश्रवणं परितुष्टेन चेतसा। ब्रह्मा सह सुरैः सर्वैर्बाढमित्येव हृष्टवत् ॥१५॥
अहं हि लोकपालानां चतुर्थं स्रष्टुमुद्यतः। यमेन्द्रवरुणानां वै पदं तत् तव चेप्सितम् ॥१६॥
सत् कृतं गच्छ धर्मज्ञ दिक्पालत्वमवाप्नुहि। यमेन्द्रवरुणानां वै चतुर्थोऽद्य भविष्यसि ॥१७॥
एतच्च पुष्पकं नाम विमानं सूर्यसन्निभम्। प्रतिगृह्णीष्व भद्रं ते त्रिदशैः समतां व्रज ॥१८॥
स्वस्त्यस्तु ते गमिष्यामिः सर्व एव यथागताः। कृतकृत्या वयं जातास्तव दत्त्वा महावरम् ॥१९॥
इत्युक्त्वा स ययौ ब्रह्मा सह देवैर्नभस्तलम्। गतेषु ब्रह्ममुख्येषु देवेषु च महात्मसु ॥२०॥
धनेशः पितरं प्राह विनयात् प्रणतो वचः। भगवल्लँब्धवानस्मि वरं कमलयोनितः ॥२१॥
निवासं न तु मे देवो विदधे स प्रजापतिः। एवमुक्तस्तु पुत्रेण विश्रवा मुनिपुङ्गवः ॥२२॥
वचनं तत्र धर्मज्ञ श्रूयतामित्यथाब्रवीत्। लङ्का नाम पुरी रम्या निर्मिता विश्वकर्मणा ॥२३॥
राक्षसानां निवासाय यथेन्द्रस्यामरावती। तत्र त्वं वस भद्रं ते रमसे तत्र नित्यशः ॥२४॥
रमणीया पुरी सा हि रुक्मवैदूर्यतोरणा। राक्षसैः सा तु सन्त्यक्ता पुरी विष्णुभयार्दितैः ॥२५॥
शून्या रक्षोगणैः सर्वै : रसातलतलं गतैः। स त्वं तत्र निवासाय रोचयस्व मतिं स्वकाम् ॥२६॥
निर्दोषस्तत्र ते वासो न च दोषोऽस्ति कश्चन। एतच्छ्रुत्वा तु धर्मात्मा धर्मिष्ठं वचनं पितुः ॥२७॥
निवेशयामास तदा लङ्कां पर्वतमूर्धनि। नैर्ऋतानां सहस्रैः सा मुदितैर्बहुभिस्तदा ॥२८॥
अचिरेणैव कालेन सम्पूर्णा तस्य शासनात्। स तु तत्रावसत् प्रीतो धर्मात्मा नैर्ऋतैः सह ॥२९॥
समुद्रपरिखायां तु लङ्कायां विश्रवःसुतः। काले काले स तु तदा पुष्पकेण धनेश्वरः ॥३०॥

मार्कण्डेय उवाच

अभ्यगच्छेद्विनीतात्मा पितरं मातरं तथा। अगस्त्यस्य वचः श्रुत्वा श्यामः प्रोवाच तं मुनिम् ॥३१॥

श्याम उवाच

भगवन् पूर्वमप्येषा लङ्काऽऽसीत् पिशिताशिनाम्। इति दम्भवचः श्रुत्वा जातो मे विस्मयः पुनः ॥३२॥
पुलस्त्यवंशादुत्पन्ना राक्षसा इति न श्रुतम्। इदानीमन्यतश्चापि सम्भवः कीर्तितस्त्वया ॥३३॥
रावणात् कुम्भकर्णाच्च प्रहस्ताद् विकटादपि। रावणस्य च पुत्रेभ्यः किं नु ते बलवत्तराः ॥३४॥
क एषां पूर्वजा ब्रह्मन् किं नामानश्च किंबलाः। अपराधं च कं प्राप्य विष्णुना बाधितास्ततः ॥३५॥
एतद्विस्तरतः सर्वं कथयस्व ममानघ। कौतूहलमिदं त्वं मे नुद भानुर्यथा तमः ॥३६॥

अगस्त्य उवाच

भार्गवस्य वचः श्रुत्वा प्रत्यभाषत तं पुनः। प्रजापतिः पुरा सृष्ट्वा चापो भार्गवनन्दन ॥३७॥
आसां गोपायने सत्त्वानसृजत् पद्मसम्भवः। ते सत्त्वाः सर्वकालेन विनीतवदुपस्थिताः ॥३८॥
किं कुर्म इत्यभाषन्त क्षुत्पिपासाभयार्दिताः। प्रजापतिस्तु तान् सर्वान् प्रत्याह प्रहसन्निव ॥३९॥
आभाष्यापः प्रयत्नेन रक्षतेति च भार्गव। रक्षाम इति तत्रान्यैर्यक्षामश्चेत्यथापरैः ॥४०॥
क्षुधिताक्षुधितैरुक्तॉंस्ततस्तानाह भूतकृत्। यक्षाम इति यैरुक्तमतो यक्षा भवन्तु वः ॥४१॥
रक्षाम इति यैरुक्तं राक्षसास्ते भवन्तु वः। ततः प्रहेतिर्हेतिश्च राक्षसौ भ्रातरावुभौ ॥४२॥
मधुकैटभसङ्काशौ बभूवतुररिन्दमौ। प्रहेतिर्धार्मिकस्तत्र दानवान् सोऽभिकाङ्क्षति ॥४३॥
हेतिर्दारक्रियार्थं तु यत्नं परममास्थितः। स कालभगिनीं पत्नीं भयां नाम भयावहाम् ॥४४॥
उदावहदमेयात्मा स्वयमेव महामतिः। स तस्यां जनयामास हेती राक्षसपुङ्गवम् ॥४५॥
पुत्रं पुत्रवतां श्रेष्ठं विद्युत्केशमिति श्रुतम्। स हेतिपुत्रो विक्रान्तः प्रदीपाग्निसमप्रभः ॥४६॥

व्यवर्धत महातेजास्तोयमध्ये यथाम्बुजम्। स यदा यौवनं तत्र प्राप्त आसीन्निशाचरः ॥४७॥
ततो दारक्रियां तस्य कर्तुं व्यवसितः पिता। सन्ध्यादुहितरं सोऽथ नाम्ना शालकटङ्कटाम् ॥४८॥
वरयामास पुत्राय हेती राक्षसपुङ्गवम्। अवश्यमेव दातव्या वराय चेति सन्ध्यया ॥४९॥
चिन्तयित्वा सुता दत्ता विद्युत्केशाय भार्गव। सन्ध्यायास्तनयां लब्ध्वा विद्युत्केशो निशाचरः ॥५०॥
रेमे वै स तया सार्धं पौलोम्या मघवानिव। कस्यचित् त्वथ कालस्य श्याम शालकटङ्कटा ॥५१॥
विद्युत्केशाद् गर्भमाप घनराजीव चार्णवात्। ततः सा राक्षसी गर्भं घनभर्गसमप्रम् ॥५२॥
प्रसूता मन्दरं गत्वा गङ्गा गर्भमिवाग्निजम्। तस्मिन्नुत्सृज्य तं गर्भं विद्युत्केशाद्रतार्थिनी ॥५३॥
रेमे पत्या तदा सर्वं विस्मृत्य सुतमात्मनः। तयोत्सृष्टस्तु स शिशुः प्रदीपाग्निसमप्रभः ॥५४॥
आस्ये पाणिं समाधाय मेघवद्विरुरोद ह। अथोपरिष्टाद् वृषभस्थितो देवो महेश्वरः ॥५५॥
अपश्यदुमया सार्धं रुदन्तं राक्षसात्मजम्। कारुण्यादथ पार्वत्या भवस्त्रिपुरसूदनः ॥५६॥
तं राक्षसात्मजं चक्रे पितुरेव वयःसमम्। अमरं चैव तं कृत्वा महादेवोऽक्षयावहम् ॥५७॥
पुरमाकाशगं प्रादात् पार्वत्याः प्रीतिकाम्यया। उमयाऽपि वरो दत्तो राक्षसेभ्यो भृगूद्वह ॥५८॥
गर्भप्राप्तिः सद्य एव प्रसूतिः सद्य एव तु। जातस्य च वयःप्राप्तिः कामतश्च भृगूद्वह ॥५९॥
ततः सुकेशो वरदानसस्थितः श्रियं प्रभोः प्राप्य भवस्य पार्श्वतः।
चचार सर्वत्र महामतिः क्षणात् खगं पुरं प्राप्य पुरन्दरो यथा ॥६०॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये सुकेशवरदानं नाम सप्तदशोऽध्यायः ॥१७॥

---

अगस्त्यले भने – पुलस्त्यका छोरा मुनि विश्रवा चाँडै नै बाबु झैँ तपस्यामा रहेका, साँचो बोल्ने असल बोली भएका, सिपालु स्वाध्यायमा संलग्न, पवित्र, सबै भोगहरूबाट छुट्टै रहेका र सधैँ धर्ममा लागेका भए। भरद्वाज मुनिले तिनको त्यस्तो चालचलन थाहा पाएर भर्खरकी राम्री आफ्नी छोरीलाई विवाह गरी विश्रवालाई दिए। भरद्वाजकी छोरीलाई पाएर खूब खुसी भएका ती विश्रवा मुनिले धर्मपूर्वक लिएर तिनबाट अनौठो पराक्रम भएको धर्म जान्ने सब आफ्ना गुणहरूले युक्त छोरो पाए। त्यो जन्मेकोमा खुसी भएका बाजेले सबै देवर्षिहरूका साथ त्यसरी यसको नाम राखे, विश्रवाको छोरो विश्रवा जस्तै भएकाले यो वैश्रवण नामले प्रख्यात हुनेछ ॥६–७॥

तपोवनमा गएका ती वैश्रवण आहुति गरिएको ठूलो तेज भएको आगोझैँ बढे। आश्रममा रहेका ती महात्माको मनमा अब धर्म गर्छु किनकि धर्म नै ठूलो गति हो भन्ने बुद्धि पैदा भयो। त्यसपछि चौध हजार वर्ष तपस्या गरे। पूरा पूरा हजारमा त्यही त्यही वृत्ति उपस्थित भयो। पानी खाएर, हावा खाएर तथा खाँदै नखाईकन यिनको एकै वर्षझैँ हजार वर्ष बिते। यसपछि खुसी भएका महातेजस्वी ब्रह्माजीले इन्द्रसहितका देवताहरूसँग आश्रममा गएर यो कुरो भने। राम्रो व्रत लिने हे बाबु ! तिम्रो यस कामले म खुसी छु। तिम्रो कल्याण हुने वर माग, तिमी वर दिइन योग्य छौ भन्ने म ठान्छु ॥८–१३॥

यसपछि अगाडि रहेका ब्रह्माजीलाई वैश्रवणले भने – हे भगवन् ! लोकपाल भएर धनको रक्षा गर्न चाहन्छु। प्रसन्न चित्त भएका ब्रह्माजीसहित सबै देवताहरूले खुसी भएर नै कुवेरलाई हुन्छ भने – यम, इन्द्र र वरुण लोकपालहरूको अतिरिक्त म तिमीले नै इच्छा गरिएको त्यो चौथो पद सिर्जना गर्न खोजिरहेको थिएँ, ठीकै गर्‍यो। हे धर्मज्ञ ! जाऊ, तिमीले दिक्पालत्व प्राप्त गर्‍यौ। आजदेखि यम, इन्द्र, वरुणहरूको मध्यमा चौँथो भयौ। यो सूर्यसमान पुष्पक नामको विमान लेऊ, तिम्रो कल्याण होस् र तिमी देवतासरहकै होऊ। तिम्रो स्वस्ति होस्। आएका हामी सबै जान्छौँ, तिमीलाई ठूलो वर दिएर हामीहरू कृतकृत्य भयौँ। यति भनेर ती ब्रह्माजी देवताहरूका साथ आकाशतिर गए। ब्रह्मादि गरिएका महात्मा देवताहरू गएपछि झुकेर कुवेरले बाबुलाई नम्रतापूर्वक यस्तो भने- भगवान् ब्रह्माजीबाट वर पाएको छु। उनै देव ब्रह्माजीले मेरो वासस्थान भने बनाइदिनुभएन ।१४–२१½॥

छोराले यस्तो भनिएका श्रेष्ठ मुनि विश्रवाले हे धर्मज्ञ ! सुन भने। विश्वकर्माले बनाएको लङ्का नामको राम्रो शहर राक्षसहरूलाई बस्नका लागि इन्द्रको अमरावती जस्तै छ। त्यहाँ तिमी बस तिम्रो कल्याण हुनेछ। सधैँ त्यहीँ रमाउनेछौ, सुन र वैदूर्यले सिँगारिएको त्यो शहर राम्रो छ। विष्णुको डरले आत्तिएका राक्षसहरूले त्यो शहर छोडिएको छ, पाताल गएका सबै राक्षसहरूले गर्दा शून्यै छ। त्यहाँ बस्नका लागि तिमी आफ्नो मन लगाऊ। त्यहाँ बस्नका लागि निर्दोष तिम्रो केही दोष हुँदैन। धर्मात्माले बाबुको यो धार्मिक कुरो सुनेर पर्वतको टाकुरामा लङ्का शहर बसाए। त्यो शहर उनैको शासनले गर्दा खुसी भएकाहजारौँ राक्षसहरूले थोरै समयमा नै भरिभराउ भयो। खुसी भएका उनी धर्मात्मा राक्षसहरूका साथ समुद्रले घेरिएको लङ्कामा बसे। समय समयमा नम्र दिल भएका ती कुवेर बाबु आमा कहाँ जान्थे ॥२२–३०॥

मार्कण्डेयले भन्नुभयो – अगस्त्यको कुरा सुनेर श्यामले ती मुनिलाई भने ॥३१॥

श्यामले भने – हे भगवान् ! पहिल्यै पनि यो लङ्का राक्षसहरूको थियो भन्ने दम्भका कुरा सुनेर फेरि मेरो आश्चर्य उत्पन्न भयो। राक्षसहरू पुलस्त्यवंशबाट उत्पन्न भएका हुन् भन्ने हामीहरूले सुनेका थियौँ। अहिले तपाईंले अरूहरूबाट पनि उत्पत्ति भएको भन्नुभयो। रावण, कुम्भकर्ण, प्रहस्त, विकट र रावणका छोराहरूभन्दा पनि के तिनीहरू बलिया थिए ? हे ब्रह्मन् ! यिनीहरूका पूर्वज को हुन् ? के नाम भएका र कस्ता बल भएका हुन् ? के अपराध गरेर विष्णुले बिताइदिए ? हे पुण्यात्मा ! यो मेरो कौतूहललाई उदाएका सूर्यले अन्धकारलाई झैँ गरी तपाईंले यो सबै विस्तारपूर्वक मलाई भन्नुहोस्। श्यामको कुरा सुनेर तिनलाई फेरि अगस्त्यमुनिले भन्नलागे ॥३२–३६॥

अगस्त्यले भने – हे श्याम ! पहिल्यै कमलबाट जन्मेका ब्रह्माजीले पानी सिर्जना गरेर जलको रक्षाका लागि प्राणीहरू सृष्टि गरे। भोक, तिर्खा र डरले त्रस्त भएका, हरघडी नम्र भएर आएका ती प्राणीहरूले के गरौँ ? भने। हे श्याम ! प्रजापतिले ती सबैलाई हाँसेझैँ गरी जललाई सबैले प्रयत्नपूर्वक रक्षा गर भने। भोकाएका र नभोकाएकाहरू मध्ये एक थरीले रक्षा गर्छौं र अर्को थरीले यज्ञ गर्छौं भने ॥३७–३९॥

तिनीहरूलाई ब्रह्माजीले भने – जसले खान्छौँ भने ती यक्ष होऊन् र जसले रक्षा गर्छौं भने तिनीहरू राक्षस होऊन्। शत्रुलाई दमन गर्ने दुई भाइ प्रहेति र हेति नाम भएका राक्षस मधुकैटभ बरोबरकै भए। त्यो धार्मिक प्रहेतिले दानवहरूलाई मन पराउँछ। हेति विवाहका लागि ठूलो यत्न गरेर बस्यो। त्यो धेरै बुद्धि भएको ठूलो राक्षस आफैँले नै डराएकाहरूलाई निडर गराउने कालकी बहिनीलाई विवाह गऱ्यो। त्यस हेतिले तिनमा विद्युत्केश नामले प्रख्यात भएको लायक छोरो जन्मायो। पराक्रमी ठूलो तेज भएको र बलेको आगो जस्तो कान्ति भएको त्यस हेतिको छोरो पानीको बीचमा रहेको कमल झैँ बढ्यो। जब त्यो राक्षस उमेरदार भयो। त्यसका बाबुले त्यसको बिहा गर्न खोजे। हेति राक्षसले छोरोको निम्ति सन्ध्याकी छोरी शालकटङ्कयलाई छान्यो ॥४०–४८॥

हे भार्गव ! वरलाई निश्चय दिनैपर्छ भन्ने सोचेर सन्ध्याले विद्युत्केशलाई छोरी दिइन्। निशाचर विद्युत्केशले सन्ध्याकी छोरी पाएर तिनका साथ इन्द्राणीसँग इन्द्रले रमण गरेझैँ आनन्दपूर्वक रमण गऱ्यो। हे श्याम ! केही समयपछि शालकटङ्कयले समुद्रबाट उठेको मेघतुल्य विद्युत्केशबाट पेट बोकिन्। त्यसपछि ती राक्षसीले घनगर्भतुल्य कान्ति भएको गर्भ मन्दरमा गएर अग्निबाट भएको गङ्गाको गर्भझैँ जन्माइन्। विद्युत्केशबाट सम्भोगको इच्छा गर्ने त्यसले त्यस गर्भलाई त्यसैमा छोडेर आफ्नो छोरोलाई पूरै बिर्सी लोग्नेसँग रमण गरी। ती दुईले छोडिएपछि त बलेको आगो जस्तो त्यो बालक मुखमा हात राखेर मेघझैँ रोयो। अनि माथि उमाका साथ साँढेमा चढेका देव महेश्वरले रोइरहेको राक्षसको छोरोलाई देख्नुभयो ॥४९–५५½॥

पार्वतीको दयाले गर्दा शिवले त्यस राक्षसको छोरोलाई बाबुको समान उमेरको बनाउनुभयो। पार्वतीको मायाले गर्दा महादेवले त्यसलाई अमर गराएर आकाशमा रहेको नाश नहुने शहर दिनुभयो। हे श्याम ! पार्वतीले पनि राक्षसहरूको गर्भप्राप्ति तुरुन्तै होस्, सुत्केरी पनि तुरुन्तै होऊन्। कामबाट जन्मेकाको पनि उमेर तुरुन्तै पुगोस् भन्ने वर दिइन्। त्यसपछि वरदान पाएको सुकेश शिवबाट कल्याण पाएर र इन्द्रले झैँ आकाशमा रहेको शहर पाएर तुरुन्तै ठूलो बुद्धि भएको त्यो संसारको चारैतिर घुम्दा भयो ॥५६–६०॥

स्कन्दपुराण अन्तर्गत हिमवत्खण्डको नेपालमाहात्म्यमा सुकेशवरदान नामको सत्रौँ अध्याय पूर्ण भयो।

# अथ अष्टादशोऽध्यायः

राक्षसानां कृते लङ्काया निर्माणम् (राक्षसाहरूका लागि लङ्कापुरीको निर्माण)

अगस्त्य उवाच

सुकेशं धार्मिकं मत्वा वरलब्धं च राक्षसम्। ग्रामणीर्नाम गन्धर्वो विश्वावसुसमप्रभः ॥१॥
तस्य देववती कन्या द्वितीया श्रीरिवापरा। तां तस्मै प्रददौ प्रीतः कृष्णायेवोदधिः श्रियम् ॥२॥
वरदानकृतैश्वर्यं सा तं प्राप्य पतिं प्रियम्। आसीद्देववती दृष्ट्वा धनं प्राप्य च दुर्भगः ॥३॥
स तया सह सुप्रीतो रेमे च रजनीचरः। अञ्जनागर्भनिष्पन्नो गजो वाऽऽसीत् तयेव हि ॥४॥
देववत्यां सुकेशस्तु जनयामास भार्गव। स त्रिनेत्रसमान् पुत्रान् जनयामास राक्षसः ॥५॥
माल्यवन्तं सुमालिं च मालिं च सुमहाबलम्। त्रयः सुकेशस्य सुताः त्रेताग्निसमतेजसः ॥६॥
त्रयो लोका इवान्यत्व गतास्त्रय इवाग्नयः। त्रयो मन्त्रा इवात्युग्रास्त्रयो घोरा इवाग्नयः ॥७॥

विवृद्धिमगमँस्तत्र व्याधयः प्रबला इव। वरप्राप्त्या ततस्ते तु ज्ञात्वैश्वर्यं पितुर्महत् ॥८॥
तपस्तप्तुं गता एवं भ्रातरः कृतनिश्चयाः। प्रगृह्य नियमान् घोरान् राक्षसा मुनिपुङ्गव ॥९॥
चेरुस्तत्र तपो घोरं सर्वभूतभयावहम्। सत्यार्जवदमोद्भूतः स तु तेषां तपोबलः ॥१०॥
निर्ददाहेव लोकाँस्त्रीन् सदेवासुरमानुषान्। ततो देवश्चतुर्वक्त्रो विमानं वरमास्थितः ॥११॥
सुकेशपुत्रानामन्त्र्य वरदोऽस्मीत्यभाषत। ब्रह्माणं वरदं ज्ञात्वा हृष्टा भार्गव राक्षसाः ॥१२॥
ऊचुः प्राञ्जलयः सर्वे वेपमाना इव द्रुमाः। तपसाऽऽराधितो देव ददासि यदि नो वरान् ॥१३॥
अजेयाः शत्रुहन्तारस्तथैव चिरजीविनः। प्रभविष्णो भविष्यामः परस्परमनुव्रताः ॥१४॥
एवं भविष्यथेत्युक्त्वा सुकेशतनयाँस्तदा। इत्युक्तः स ययौ देवो ब्रह्मा ब्राह्मणवत्सलः ॥१५॥
वरं लब्ध्वा तु ते सर्वे श्याम रात्रिञ्चरेश्वराः। सुरासुरनराणां तु वरदानात् सुनिर्भयाः ॥१६॥
तैर्बाध्यमानास्त्रिदशा ऋषिसङ्घाः सचारणाः। त्रातारं नाध्यगच्छंस्ते निरपत्या यथा नराः ॥१७॥
अथ ते विश्वकर्माणं शिल्पिनां प्रभुमव्ययम्। प्रोचुराहूय सहिता राक्षसा भृगुनन्दन ॥१८॥
गृहकर्ता भवान् देवो देवानां हृदयेप्सितम्। अस्माकमपि देव त्वं गृहान् कर्तुमतोऽर्हसि ॥१९॥
हिमवन्तं समासाद्य मेरुमन्दरमेव च। सुरेश्वरगृहप्रख्यान् गृहान् नः कुरु विश्वकृत् ॥२०॥
विश्वकर्मा वचः श्रुत्वा राक्षसानां महात्मनाम्। निजगाद क्षणं ध्यात्वा राक्षसेभ्यो महत्स्थलम् ॥२१॥

विश्वकर्मोवाच

शकुनैरपि दुष्प्रापं टङ्कच्छिन्नं चतुर्दिशम्। त्रिंशद्योजनविस्तीर्णं शतयोजनमायतम् ॥२२॥
तत्र लङ्का च नगरी मया शक्राज्ञया कृता। सा सुवर्णमयी लङ्का रत्नवैदूर्यतोरणा ॥२३॥
तस्यां वसत दुर्धर्षा पुर्यां राक्षससत्तमाः। सहस्रानुचराः कृत्वा गत्वा भार्गव सत्पुरीम् ॥२४॥
दृढप्राकारपरिखां हैमैर्गृहशतैर्वृताम्। लङ्कामवाप्य ते हृष्टा अवसन् रजनीचराः ॥२५॥

मार्कण्डेय उवाच

इत्यगस्त्यवचः श्रुत्वा भृगुवंशसमुद्भवः। श्यामः पप्रच्छ विनयादगस्त्यं मुनिसत्तमम् ॥२६॥

श्याम उवाच

दक्षिणस्योदधेस्तीरे सुमेरुशिखरे कथम्। लङ्का स्वर्णमयी विश्वकर्मणा निर्मिता कथम् ॥२७॥
एतं नः संशयं छिन्धि सर्वज्ञ मुनिसत्तम। श्यामवाक्यं समाकर्ण्यागस्त्यः प्राह पुनश्च तम् ॥२८॥

अगस्त्य उवाच

अहं ते कथयिष्यामि लङ्कोत्पत्तिं निशामय। पुरा सुमेरुशिखरे नानारत्नविचित्रिते ॥२९॥
दिव्या देवसभा जाता सिद्धगन्धर्वचारणैः। तत्र प्रसङ्गतो जाता कथा बलवतां मुने ॥३०॥
कश्चित् तत्र सुरः प्राह वायुर्बलवतां वरः। नेति देवः कश्चिदाह गरुडो बलिनां वरः ॥३१॥
सुरान् सुरेन्द्रः सम्प्राह ज्ञातव्यमनयोर्बलम्। कथं विशेषतो देवाः प्रभञ्जनसुपर्णयोः ॥३२॥
सुरेन्द्रवचनं श्रुत्वा नारदः प्राह देवताः। सुमेरुशृङ्गमेकं हि धृत्वा वै विनतात्मजः ॥३३॥
तिष्ठतूपरिविक्रान्तो वायुरुत्पाटयत्वमुम्। तदा बलं परीक्षामः प्रभञ्जनसुपर्णयोः ॥३४॥
नारदस्य वचः श्रुत्वा वाढमित्यब्रवीद्वचः। वायुरप्याह गरुडं सुपर्णं भव विक्रमी ॥३५॥
इति वायुवचः श्रुत्वा गरुडो बलिनां वरः। धृत्वा सुमेरुशिखरं तस्थौ विक्रमपूर्वकम् ॥३६॥
ववौ प्रभञ्जनः शीघ्रं महाविक्रमपूर्वकम्। उन्मूलयामास गिरीन्महावृक्षाननेकशः ॥३७॥
महाझञ्झानिलोद्भूतैस्तरङ्गैश्च महोदधिः। जगत् सम्प्लावयामास लोका व्याकुलतां ययुः ॥३८॥
झञ्झावायुसमुद्भूतपांशुभिः कवलीकृतौ। न दृक्पथं समायातौ प्राणिनां चन्द्रभास्करौ ॥३९॥
सञ्चालने सुपर्णस्य पक्षस्यैकस्य मारुतः। अपि सञ्चलने शक्तो नालं विक्रमसंयुतः ॥४०॥
शिखरोन्मूलने शक्तिः का हि वायोर्भविष्यति। वायुर्बलवतां श्रेष्ठः कृत्वा द्विगुणविक्रमम् ॥४१॥
व्याकुलं च जगच्चक्रे सर्वं स्थावरजङ्गमम्। झञ्झावातहताः केचित् प्राणिनो निधनं गताः ॥४२॥
उन्मूलितैर्गिरिवरैर्देशाश्चूर्णीकृता भृशम्। त्रैलोक्यविकलं सर्वं ब्रह्माणं शरणं ययौ ॥४३॥

सुमेरुशिखरं गत्वा ब्रह्मा लोकपितामहः । वन्दितस्त्रिदशैः सर्वैः प्रभञ्जनमथाब्रवीत् ॥४४॥

ब्रह्मोवाच

प्रभञ्जन निवर्तस्व जगत् सर्वं विनश्यति । देहिनां प्राणभूतोऽसि जानेऽहं विक्रमं तव ॥४५॥
क्षमां कुरु जगत्प्राण क्षमाशीला हि पण्डिताः । कुरुष्व जगतां रक्षां जानेऽहं बलवानसि ॥४६॥

अगस्त्य उवाच

इति धातुर्वचः श्रुत्वा प्राह वाक्यं प्रभञ्जनः ।

वायुरुवाच

मेरुशृङ्गमनुत्पाद्य निवृत्तो न भवाम्यहम् ॥४७॥
जगत् तिष्ठतु वा यातु नाशं तत्र न मे वृथा । इति वायुवचः श्रुत्वा ब्रह्मा विष्णुमुवाच ह ॥४८॥

ब्रह्मोवाच

निवारय हृषीकेश गरुडं बलिनां वरम् । वायुरुत्पाटयत्वेनं न चेत् सृष्टिर्विनश्यति ॥४९॥

श्रीविष्णुरुवाच

श्रुत्वा ब्रह्मवचो विष्णुर्गरुडं प्राह तत्क्षणात् । निवृत्तो भव पक्षीन्द्र जानेऽहं तव विक्रमम् ॥५०॥
उत्पाद्य मेरुशिखरं तुष्टो भवतु मारुतः । पक्षी विष्णुवचः श्रुत्वा किं चिच्छैथिल्यमाययौ ॥५१॥
वायुरुत्पाटयामास मेरुशृङ्गं महाबलः । दक्षिणस्योदधेस्तोयमध्ये शृङ्गं पपात ह ॥५२॥
तत्सुवर्णमयं शृङ्गं सिन्धुतोयैः सुवेष्टितम् । प्रोवाच विश्वकर्माणं शक्रो दृष्ट्वा मनोहरम् ॥५३॥
विश्वकर्मन् महाभाग वासाय मम सत्त्वरम् । कुरु लङ्कापुरीं रम्यां परिखीकृतसागराम् ॥५४॥
इति शक्रवचः श्रुत्वा विश्वकर्मा महाकृती । लङ्कानामपुरीं चक्रे शक्रस्यैवामरावतीम् ॥५५॥
लङ्कानामपुरीं रम्यामुवास बलसूदनः । सर्वदेवगणैः सार्धं निजां त्यक्त्वाऽमरावतीम् ॥५६॥
एतद्वृत्तान्तमाकर्ण्य ब्रह्मा मुनिगणैः सह । विश्वकर्मकृतां लङ्कां ययौ द्रष्टुं मनोहराम् ॥५७॥
लङ्कायामागतं दृष्ट्वा ब्रह्माणं बलसूदनः । प्रत्युद्ययावादरेण सर्वदेवगणैः सह ॥५८॥
पूजयित्वा यथान्यायं कृतासनपरिग्रहम् । उवाच विनतो भूत्वा ब्रह्माणं बलसूदनः ॥५९॥
लङ्कानामपुरीं रम्यां परिखीकृतसागराम् । ब्रह्मन् संदृश्यतां दिव्यां मम वासाय कल्पिताम् ॥६०॥

अगस्त्य उवाच

इति देववचः श्रुत्वा विरञ्चिर्लोकपूजितः । तुङ्गसौधं समारुह्य ददर्श नगरीं तदा ॥६१॥
निम्नां दक्षिणदिग्भागे लङ्कां दृष्ट्वा मनोहराम् । ब्रह्मा प्रोवाच देवेन्द्रं मुनिभिः परिवारितः ॥६२॥
इयं दक्षिणदिग्भागे निम्ना लङ्कापुरी यतः । अतो हि रक्षसां स्थानमियं लङ्का भविष्यति ॥६३॥
निम्ना दक्षिणदिग्भागे या पुरी त्रिदशेश्वर । तस्यां निवसतामादौ वृद्धिरन्ते पुनः क्षयः ॥६४॥
निवसिष्यन्ति लङ्कायां प्राणिनो धार्मिका अपि । ते सर्वे क्रूरकर्माणो भविष्यन्ति न संशयः ॥६५॥
न वस्तव्यं त्वया शक्र लङ्कायामिति हेतुतः । राक्षसा निवसिष्यन्ति घोरा लोकभयावहाः ॥६६॥
इत्युक्त्वा प्रययौ ब्रह्मा मुनिभिः परिवारितः । विहाय लङ्कां देवेशो जगाम स्वपुरीं ततः ।
ततः प्रभृति शून्याऽभूल्लङ्का स्वर्णमयी मुने ॥६७॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्येऽष्टादशोऽध्यायः ॥१८॥

---

अगस्त्यले भने – वर पाएको धार्मिक राक्षस सुकेश हुन् भन्ने ठानेर विश्वावसुसमान ग्रामणी नामको गन्धर्वले दोस्री लक्ष्मीजस्ती देववती नामकी उनकी ती कन्या छोरीलाई समुद्रले विष्णुलाई लक्ष्मीझैं तिनलाई खुसी भएर दिए। वरदानबाट ऐश्वर्य पाएको प्यारो त्यस पतिलाई पाएर ती देववती खुसी थिइन्। दुर्भग त्यो रजनीचर धन समेत पाई खुसी भएर तिनका साथ रमण गर्न लाग्यो। हे भार्गव ! अञ्जनाको गर्भबाट हात्ती पैदा भएको थियो। तिनैले झैं देववतीबाट सुकेशले छोरा पायो। त्यस राक्षसले खूब बलिया माल्यवान्, सुमाली र माली नामका त्रिनेत्र जस्ता छोरा पायो। त्रेताग्नि जस्ता सकेशका तीनावटा छोरा तीनवटा लोक जस्ता र अर्का तीनवटा अग्नि जस्ता भए। तीन मन्त्र जस्ता उग्र तीन अग्निझैं घोर ती प्रबल रोगझैं बढे ॥१–६५॥

त्यसपछि धन पाएर र बाबुको ठूलो ऐश्वर्य जानेर निश्चय गरेका तीनै भाइहरू तपस्या गर्न गए। हे मुनि श्याम ! राक्षसहरूले घोर नियमहरू लिएर सबै प्राणीहरूलाई नै डर गराउन घोर तपस्या गरे। सत्य सोझोपना र इन्द्रियनिग्रहबाट निस्केको तिनीहरूको तपोबल देवता, असुर र मानिससहितका तीनै लोकलाई डढाउँछ क्यारे जस्तो थियो। त्यसपछि श्रेष्ठ विमानमा बसेर आएका ब्रह्माजीले सुकेशका छोराहरूलाई बोलाएर वर दिन्छु भने। हे भार्गव ! वर दिने भए भन्ने ब्रह्मालाई लागेर काँपेका रुख जस्ता सबै राक्षसहरूले हात जोडेर भने। हे देव !तपाईं तपस्याले आराधना गरिएको हुनुहुन्छ। यदि हामीलाई वर दिनुहुन्छ भने जित्न नसकिने, शत्रुलाई मार्ने र धेरै बाँच्ने होऔँ। त्यस्तै परस्परका व्रतमा पछि लाग्ने र समर्थवान् होऔँ ॥७–१४½॥

सुकेशका छोराहरूलाई यस्तो होऊ भनेर ब्राह्मणका प्यारा ब्रह्माजी ब्रह्मलोक गए। हे श्याम ! देव, दानव मानवहरूको बीचमा वर पाएर नडराउने भएका ती सबै राक्षसहरू थिए। तिनीहरूले पिरिएको देवताहरू ऋषि र चारणहरूले सन्तान नभएका मानिसले झैँ रक्षा पाएनन्। हे भृगुनन्दन ! राक्षसले सहित भएका तिनीहरूले कालिगडहरूका मालिक अविनाशी विश्वकर्मालाई बोलाएर भने – हे देव ! हे विश्वकर्मा ! तपाईं देवताहरूको इच्छाबमोजिम घर बनाउने हुनुहुन्छ। हे देव ! तपाईं हाम्रा पनि घर बनाउन योग्य हुनुहुन्छ। हिमालय, मेरु र मन्दर पर्वतमा पुगेर इन्द्रका जस्ता घरहरू हाम्रा निमित्त बनाइदिनुहोस्। ठूलठूला राक्षसहरूको बोली सुनेर एकै छिन घोरिएर विश्वकर्माले तिनीहरूलाई राक्षसहरूको ठूलो स्थलका विषयमा बताए ॥१५–२१॥

विश्वकर्माले भने – पक्षीहरू पनि पुग्न नसक्ने, चारै दिशा छिनोले काटिएको, तीस योजन फराकिलो र सय योजन लामो। त्यहाँ लङ्का नामको शहर छ। मैले इन्द्रको आज्ञाले बनाएको हो। त्यो सुनै सुनको लङ्का रत्न र वैदूर्यहरूले सिँगारिएको छ। हे जित्न नसकिने राक्षसहरू! हो हजारौँ सेवकहरू बनाएर बलियो पर्खालको घेरा भएको, सयौँ सुनका घरहरूको उत्तम त्यस शहरमा गएर बस्नुहोस्। लङ्का पुगेर खुसी भएका ती राक्षसहरू बसे ॥२२–२५॥

मार्कण्डेयले भने – अगस्त्यको यस्तो कुरा सुनेर भृगुवंशमा उत्पन्न भएका श्यामले नम्रतापूर्वक मुनि अगस्त्यलाई सोधे ॥२६॥

श्यामले भने – दक्षिण समुद्रको तीरमा सुमेरुको चुचुरोमा कसरी सुनैसुनको लङ्का विश्वकर्माले बनाए ? यस्तो हाम्रो शङ्का नाश गरिदिनुहोस्। हे सर्वज्ञ मुनिसत्तम ! श्यामको कुरा सुनेर अगस्त्यले तिनलाई फेरि भने ॥२७–२८॥

अगस्त्यले भने – म तपाईंलाई लङ्काको उत्पत्तिबारे भन्दछु, सुन्नुहोस्। पहिल्यै विभिन्न रत्नहरूले विचित्र सुमेरुको चुचुरोमा सिद्ध, गन्धर्व र चारणहरूको दिव्य देवसभा भयो। हे मुनि ! त्यहाँ प्रसङ्गले बलियाहरूको चर्चा चल्यो। त्यहाँ कुनै एक देवताले वायु सबैभन्दा बलिया छन् भने कुनै अर्काले हे देव हैन ! गरुड सबैभन्दा बलिया छन् भने ॥२९–३१॥

देवताहरूलाई इन्द्रले भने – हे देवताहरू ! हो यी वायु र गरुडको बल राम्रोसँग कसरी जान्ने ? सुरेन्द्रको बोली सुनेर नारदले भने – देवता हो ! एउटा सुमेरुको चुचुरो पक्डेर माथि गरुड बसून्। पराक्रमी वायुले यसलाई उछिट्याऊन् अनि वायु र गरुडको बलको परीक्षा गरौँ ॥३२–३४॥

नारदको कुरो सुनेर सबैले हुन्छ भने। वायुले पनि गरुड अब पराक्रमी हुनुहोस् भने। यस्तो वायुको बोली सुनेर खूब बलिया गरुड सुमेरुको चुचुरो पक्डेर बलियो भएर बसे। वायुले तुरुन्तै खूब तोडले बहेर पर्वतहरूसहित अनेकौँ रुखहरू उखेले। ठूलो आँधीबाट निस्केका छालद्वारा समुद्रले संसार डुबाइदियो, मानिसहरू व्याकुल भए। आँधीबाट उठेका, धूलाले ढाकिएका चन्द्र र सूर्य प्राणीहरूको आँखामा देखा पर्न आएनन्। गरुडको एक प्वाँख पनि चलाउन बलिया वायुले सकेनन्। चुचुरै उखेल्ने शक्ति वायुको के को हुने र ? बलियाहरूमा पनि बलिया गनिएका वायुले दोब्बर बल गरेर सब संसारका स्थावर र जङ्गमलाई नै व्याकुल पारे। आँधीबेहरीले हानिएका केही प्राणी मरे। उखेलिएका पर्वतहरूद्वारा देशहरू नराम्रोसँग धूलो गराइए। पीडित भएका सबै तीनै लोक नै ब्रह्माजीको शरणमा गए। सबै देवताहरूले वन्दना गरिएका लोकका पितामह ब्रह्माजी सुमेरुको टुप्पोमा गई वायुलाई भन्नुभयो ॥३५–४४॥

ब्रह्माजीले भन्नुभयो – वायु ! तिमी रोकिय नत्र सबै संसार नासिनेछ। तिमी शरीरधारीहरूका प्राण हौ। तिम्रो पराक्रम म जान्दछु। हे संसारका प्राण ! क्षमा गर, पण्डितहरू क्षमा गर्ने नै हुन्छन्। संसारको रक्षा गर, तिमी बलवान् छौ म जान्दछु ॥४५–४६॥

अगस्त्यले भने – ब्रह्माजीको यस्तो वचन सुनेर वायुले भने – मेरुको टुप्पो नउखेली म रोकिन्नँ। संसार रहोस् अथवा नासियोस्, मलाई केही वास्ता छैन। यस्तो वायुको कुरा सुनेर ब्रह्माले विष्णुलाई भन्नुभयो ॥४७–४८॥

ब्रह्माजीले भन्नुभयो – हृषीकेश ! बलियाहरूमा श्रेष्ठ गरुडलाई रोक्नुहोस्। सुमेरु शृंगलाई वायुले उखेलून् नत्र भने सृष्टि नै नासिन्छ। विष्णुले ब्रह्माको कुरा सुनेर तत्कालै गरुडलाई भन्नुभयो ॥४९॥

श्रीविष्णुले भन्नुभयो – हे पक्षिराज ! हट्नुहोस्। तपाईंको पराक्रम जान्दछु। मेरुको टुप्पो उखेलेर वायु खुसी होऊन्। गरुडले विष्णुको कुरो सुनेर केही शैथिल्य लिए। महाबली वायुले मेरुको टुप्पो उछिट्याए दक्षिण समुद्रको पानीको बीचमा त्यो शृङ्ग खस्यो। समुद्रको पानीले घेरिएको राम्रो त्यस टकुरालाई देखेर विश्वकर्मालाई इन्द्रले भने। हे महाभाग विश्वकर्मा ! चाँडै नै मेरो वासका लागि सुमद्रले घेरिएको राम्रो लङ्कापुरी बनाउनुहोस् ॥५०–५४॥

यस्तो इन्द्रको कुरा सुनेर महाकृति विश्वकर्माले इन्द्रकै अमरावती जस्तो लङ्कापुरी बनाए। आफ्नो अमरावतीलाई छोडेर राम्रो लङ्कापुरीमा सबै देवताहरूका साथ इन्द्र बसे। यस्तो हालखबर सुनेर विश्वकर्माले बनाएको मनोहर लङ्का हेर्न मुनिहरूका साथ ब्रह्माजी जानुभयो। लङ्कामा ब्रह्माजी आएको देखेर इन्द्र सबै देवताहरूका साथ आदरपूर्वक लिन गए। क्रम अनुसार पूजा गरेर पछि आसनमा बसेका ब्रह्माजीलाई इन्द्रले नम्र भएर भने। हे ब्रह्माजी ! मेरो वासका लागि बनाइएको दिव्य सुमद्रले घेरिएको लङ्का नामको राम्रो शहर हेर्नुहोस् ॥५५–६०॥

अगस्त्यले भने – यस्तो देवताको कुरा सुनेर लोकले पूजिएका ब्रह्माजीले चूनले पोतिएको अग्लो दरबारमा चढी शहरलाई हेर्नुभयो। दक्षिणपट्टि होचो भएको मनोहर लङ्कालाई देखेर मुनिहरूले घेरिएका ब्रह्माजीले देवेन्द्रलाई भन्नुभयो – दक्षिण दिशापट्टि भिरालो परेको यो लङ्कापुरी हुनाले यो लङ्का राक्षसहरूको स्थान हुनेछ। हे इन्द्र ! दक्षिणपट्टि भिरालो परेको जुन यो शहर छ, त्यसमा बस्नेहरूको पहिल्यै बढिबढाउ र फेरि पछि नाश हुनेछ। लङ्कामा धार्मिक प्राणीहरू पनि बस्नेछन्। निःसन्देह ती सबै पनि क्रूर काम गर्ने हुनेछन्। भयङ्कर संसारैलाई डर गराउने राक्षसहरू बस्नेछन् भन्ने कारणले नै इन्द्र तपाईं लङ्कामा नबस्नुहोस्। यति भनेर मुनिहरूले घेरिएका ब्रह्माजी जानुभयो र इन्द्र पनि लङ्का छोडेर आफ्नो शहरमा गए। हे मुनि श्याम ! त्यहाँदेखि सुनैसुनको लङ्का शून्य भयो ॥६१–६७॥

स्कन्दपुराण अन्तर्गत हिमवत्खण्डमा नेपालमाहात्म्यको अठारौँ अध्याय पूर्ण भयो।

## अथ ऊनविंशोऽध्यायः

लङ्कायां राक्षसानामवस्थावर्णनम्

(लङ्कामा राक्षसहरूको अवस्थाको वर्णन)

श्याम उवाच

ततस्ते मुनिशार्दूल लङ्कायां राक्षसेश्वराः। किमकुर्वन्त ते वीरास्तन्माख्यातुमर्हसि ॥१॥

मार्कण्डेय उवाच

इति श्यामवचः श्रुत्वा जैमिने मुनिसत्तम। भृगुवंशसमुद्भूतमगस्त्यः प्राह सादरम् ॥२॥

अगस्त्य उवाच

एतस्मिन्नेव काले तु यथाकामं च भार्गव। नर्मदा नाम गन्धर्वी बभूव भृगुनन्दन ॥३॥
तस्याः कन्यात्रयं ह्यासीत् ह्रीश्रीकान्तिसमद्युति। ज्येष्ठक्रमेण सा तेषां राक्षसानामराक्षसी ॥४॥
कन्यास्ताः प्रददौ हृष्टाः पूर्णचन्द्रनिभाननाः। त्रयाणां राक्षसेन्द्राणां तिस्रो गन्धर्वकन्यकाः ॥५॥
दत्ता मात्रा महाभागा नक्षत्रे भगदैवते। कृतदारास्तु ते श्याम सुकेशतनयास्तदा ॥६॥
चिक्रीडुः सह भार्याभिरप्सरोभिरिवामराः। तत्र माल्यवती नाम सुन्दरीणां च सुन्दरी ॥७॥
स तस्यां जनयामास यदपत्यं निबोध तत्। वज्रमुष्टिर्विरूपाक्षो दुर्मुखश्चैव राक्षसाः ॥८॥
सुमुखो यज्ञकेतुश्च मत्तोन्मत्तस्तथैव च। सुलोचनाऽभवत् कन्या सुन्दर्या नाम सुन्दरी ॥९॥
सुमालिनोऽपि भार्याऽऽसीत् पूर्णचन्द्रनिभानना। नाम्ना केतुमती श्याम प्राणेभ्योऽपि गरीयसी ॥१०॥
सुमाली जनयामास यदपत्यं निशाचरः। केतुमत्यां भृगुश्रेष्ठ तन्निबोधानुपूर्वशः ॥११॥
प्रहस्तोऽकम्पनश्चैव विकटः कालिकामुखः। धूम्राक्षश्चाथ दण्डश्च सुपार्श्वश्च महाबलः ॥१२॥
संह्रादिः प्रघसश्चैव भासकर्णश्च राक्षसः। राका पुष्पोत्कटा चैव नैकसी च शुचिस्मिता ॥१३॥
कुम्भीनसी तथेत्येताः सुमालिप्रभवाः स्मृताः। मालिनो वसुदा नाम गन्धर्वी रूपशालिनी ॥१४॥
भार्याऽऽसीत् पद्मपत्राक्षी साक्षात् पद्मसमानना। सुमालिनोऽनुजस्तस्यां जनयामास यन्मुने ॥१५॥
अपत्यं कथ्यमानं तु निबोध मम भार्गव। अनिलश्च निलश्चैव भीमः सम्पातिरेव च ॥

एते विभीषणामात्याः प्रालेयास्ते निशाचराः ॥१६॥
ततस्तु ते राक्षसपुङ्गवास्त्रयो निशाचरैः पुत्रशतैश्च संवृताः ।
सुरान्महेन्द्रानृषिनागदानवान् बबाधिरेऽतिप्रबलातिगर्विताः ॥१७॥
जगद्ग्रसन्तोऽनलवद्दुरासदाः रणप्रचण्डाः शतशः सदोद्यताः ।
वरप्रदानादभिवर्धिता भृशं क्रतुक्रियाणां प्रशमं प्रचक्रिरे ॥१८॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये ऊनविंशोऽध्यायः ॥१९॥

---

श्यामले भने – हे श्रेष्ठमुनि ! त्यसपछि ती वीर राक्षसहरूले लङ्कामा के के गरे ? त्यो मलाई भन्न योग्य हुनुहुन्छ ॥१॥

मार्कण्डेयले भन्नुभयो – हे जैमिनि मुनि ! यस्तो श्यामको कुरा सुनेर अगस्त्यले भृगुवंशमा उत्पन्न भएकालाई आदरसाथ भने ॥२॥

अगस्त्यले भने – हे भृगुका छोरा श्याम ! यसै बेलामा इच्छामाफिककी नर्मदा नामकी गन्धर्वी भइन् ॥३॥ तिनका लज्जा श्री र कान्ति समान तेज भएका तीनवटा छोरी थिए। ती अराक्षसी गन्धर्वीले जेठाको क्रमले ती राक्षसहरूलाई हँसिला र पूर्णचन्द्रसमान अनुहार भएका ती कन्याहरू दिइन्। तीनवटा राक्षसेन्द्रहरूलाई लायक तीनवटा गन्धर्वका छोरीहरू उत्तराफाल्गुणी नक्षत्रमा आमाले दिइएका थिए। हे श्याम ! विवाह गरेका ती सुकेशका छोराहरूले अप्सराहरूसँग देवताहरूले झैं गरी पत्नीहरूसँग रमण गरे ॥३–६½॥

त्यहाँ राम्रीहरूमा पनि राम्री माल्यवती नाम गरेकी सुन्दरी थिइन्। त्यसले तिनै सुन्दरीबाट आठवटा सन्तान पैदा गऱ्यो। ती वज्रमुष्टि, विरूपाक्ष, दुर्मुख, सुमुख, यज्ञकेतु, मत्त र उन्मत्त नामका राक्षसहरू र सुन्दरीको सुलोचना नामकी सुन्दरी छोरी पनि भइन् ॥४–९॥

हे श्याम ! सुमालीकी पनि पूर्णचन्द्रजस्तो मुख भएकी र प्राणभन्दा पनि प्यारी केतुमती नामकी पत्नी थिइन्। राक्षस सुमालीले केतुमतीमा जुन सन्तान जन्मायो, तिनलाई क्रमैसँग सुन्नुहोस् – प्रहस्त, अकम्पन, विकट, कालिकामुख, धूम्राक्ष, दण्ड, सुपार्श्व, महाबल संह्रादि, प्रघस, भासकर्ण राक्षस । राका, पुष्पोत्कटा, नैकसी, शुचिस्मिता र कुम्भीनसी यी सुमालीका छोरीहरू भए। मालीका कमलको पातजस्तो आँखा भएकी र दुरुस्तै कमल जस्तो अनुहार भएकी राम्री वसुदा नामकी गन्धर्वी पत्नी थिइन्। हे भार्गव मुनि ! सुमालीको भाइले बसुदाबाट जुन सन्तान जन्मायो, तिनका नाम सुन्नुहोस् – अनिल, निल, भीम र सम्पाति, प्रालेया भनिने राक्षस विभीषणका मन्त्री हुन् अनि सयौं राक्षस छोराहरू भएका ज्यादै बलिया र खूब सेखी गर्ने ती तीनवटा राक्षसहरूले देवता, ऋषि, नाग र दानवहरूलाई पनि पिर्न थाले। संसारलाई निल्ने आगो झैं जित्न नसकिने लडाईंमा प्रचण्ड भएका र युद्धका लागि सधैं तत्पर वर दिनाले खूब बढेका तिनले यज्ञ आदि क्रिया समाप्त गरे ॥१०–१८॥

स्कन्दपुराण अन्तर्गत हिमवत्खण्डमा नेपालमाहात्म्यको उन्नाइसौं अध्याय पूर्ण भयो।

# अथ विंशतितमोऽध्यायः

देवदानवयुद्धम् (देवासुरसङ्ग्राम)

अगस्त्य उवाच

तैर्बाध्यमाना देवाश्च मुनयश्च तपोधन। भयार्ताः शरणं जग्मुर्देवदेवं महेश्वरम् ॥१॥
प्रणम्य दण्डवद्भूमौ भयाद्गद्गभाषिणः। सुकेशपुत्रैर्भगवन् बाधिताः स्म हताश्च ह ॥२॥
प्रजाध्यक्षः प्रजाः सर्वा बाध्यन्ते रिपुनाशन। शरण्येहाः शरण्याश्च कृतास्ते राक्षसैर्विभो ॥३॥
स्वर्गात् प्रच्यवते शक्रः स्वर्गे क्रीडन्ति देववत्। अहं विष्णुरहं रुद्रो ब्रह्माऽहं देवराडहम् ॥४॥
अहं यमोऽहं वरुणश्चन्द्रोऽहं रविरप्यहम्। इति ते राक्षसा देव वरदानेन दर्पिताः ॥५॥
भाषन्ते समरे हर्षाद्ये च तेषां पुरःसराः। तन्नो देव भयार्तानाभयं दातुमर्हसि ॥६॥
अशिवं वपुरास्थाय जहि तान् देवकण्टकान्। इत्युक्तः स सुरैः सर्वैः कपर्दी नीललोहितः ॥७॥
सुकेशं प्रति सापेक्षः प्राह देवगणान् प्रभुः। अहं तान् न हनिष्यामि ममावध्या हि तेऽसुराः ॥८॥
किं तु मन्त्रं प्रवक्ष्यामि यो वै तान् निहनिष्यति। एवमेव समुद्योगं पुरस्कृत्य सुरर्षभाः ॥९॥

गच्छन्तु शरणं विष्णु हनिष्यति स तान् प्रभुः। ततस्ते जयशब्देन नन्दित्वा वै महेश्वरम् ॥१०॥
विष्णोः समीपं ते जग्मुर्निशाचरभयार्दिताः। शङ्खचक्रधरं ते तु प्रणम्य बहुमानतः ॥११॥
ऊचुः सभ्रान्तवद्वाक्यं सुकेशतनयार्दिताः। सुकेशनयैर्देव त्रिभिस्त्रेताग्निसन्निभैः ॥१२॥
आक्रम्य वरदानेन वश्या देवकृता वयम्। लङ्का नाम पुरी रम्या त्रिकूटशिखरस्थिता ॥१३॥
तत्र स्थित्वा प्रबाधन्ते सर्वान् नः क्षणदाचराः। स त्वमस्मत्प्रियार्थं हि जहि तान् मधुसूदन ॥१४॥
चक्रकृत्तास्यकमलान् निवेदय यमाय वै। भयेष्वभयदोऽस्माकं नान्योऽस्ति भवता समः ॥१५॥
नुद तन्नो भयं देव नीहारमिव भास्करः। इत्येवं तैः सुरैरुक्तो देवदेवो जनार्दनः ॥१६॥
अभयं भयभीतानां दत्त्वा देवानुवाच ह। सुकेशं राक्षसं जाने ईशानवरदर्पितम् ॥१७॥
त्रीस्तैस्य तनयाञ्जाने येषां ज्येष्ठः स माल्यवान्। तानहं समतिक्रान्तमर्यादान् राक्षसाधमान् ॥१८॥
सूदयिष्यामि सङ्ग्रामे सुरा भवत विज्वराः। इत्युक्ताः ते सुराः सर्वे विष्णुना प्रभविष्णुना ॥१९॥
यथावासं ययुर्हृष्टाः प्रशंसन्तो जनार्दनम्। विबुधानां समुद्योगं माल्यवान् स निशाचरः ॥२०॥
श्रुत्वा तौ भ्रातराविष्टाविदं वचनमब्रवीत्। अमरा मुनयश्चैव समेत्य किल शङ्करम् ॥२१॥
अस्मद्वधं परीप्सन्त इदमूचुस्त्रिलोचनम्। सुकेशतनया देववरदानवरोद्धताः ॥२२॥
बाधन्तेऽस्मान् समुद्युक्ता घोररूपाः पदे पदे। राक्षसैरभूभितास्ते न शक्ताः स्म उमापते ॥२३॥
स्वेषु धर्मेषु संस्थातुं भयात् तेषां दुरात्मनाम्। तदस्माकं हितार्थाय जहि ताँस्तु त्रिलोचन ॥२४॥
राश्रसान् हूंकृतेनैव दह प्रदहतां वर। इत्येवं त्रिदशैरुक्तो निशम्यान्धकसूदनः ॥२५॥
शिरः करं च धुन्वान इदं वचनमब्रवीत्। अवध्या मम ते देवाः सुकेशतनया रणे ॥२६॥
मन्त्रं तु वः प्रवक्ष्यामि यस्तान् वै निहनिष्यति। योऽसौ चक्रगदापाणिः पीतवासा जनार्दनः ॥२७॥
हरिर्नारायणः श्रीमान् शरणं तं प्रपद्यत। हरादवाप्य ते मन्त्रं कामारिमभिवाद्य च ॥२८॥
नारायणालयं प्राप्य तस्मै सर्वं न्यवेदयन्। ततो नारायणेनोक्ता देवा इन्द्रपुरोगमाः ॥२९॥
सुरारींस्तान् हनिष्यामि देवा भवत निर्भयाः। देवानां भयभीतानां हरिणा राक्षसर्षभौ ॥३०॥
प्रतिज्ञातो वधोऽस्माकं चिन्त्यतां यदिह क्षमम्। हिरण्यकशिपोर्मृत्युरन्येषां च सुरद्विषाम् ॥३१॥
नमुचिः कालनेमिश्च संह्रादो वरीसत्तमः। राधेयो बहुमायी च लोकपालोऽथ धार्मिकः ॥३२॥
यमलार्जुनौ च हार्दिक्यः शुम्भश्चैव निशुम्भकः। असुरा दानवाश्चैव सत्त्ववन्तो महाबलाः ॥३३॥
सव समरमासाद्य श्रूयन्ते च पराजिताः। सर्वैः क्रतुशतैरिष्टं सर्वमायाविदस्तथा ॥३४॥
नारायणेन निहता शतशोऽथ सहस्रशः। एतज्ज्ञात्वा तु सर्वेषां क्षेमं कर्तुमिहार्हथ ॥३५॥
विष्णोर्दोषस्तु नास्त्यत्र कारणे राक्षसेश्वरौ। देवानामेव दोषेण विष्णोः प्रचलितं मनः ॥३६॥
दुःखं नारायणं जेतुं यो नो हन्तुमिहेच्छति। ततः सुमाली माली च श्रुत्वा माल्यवतो वचः ॥३७॥
ऊचतुर्भ्रातरं ज्येष्ठमश्विनाविव वासवम्। स्वाधीनं दत्तमिष्टं च ऐश्वर्यं परिपालितम् ॥३८॥
आयुर्निरामयं प्राप्तं धर्मश्चापि कुलोचितः। देवसागरमक्षोभ्यं शस्त्रैः समवगाह्य नः ॥३९॥
जिता द्विषो ह्यप्रतिमा न नो मृत्युभयं कृतम्। नारायणश्च रुद्रश्च शक्रश्चापि यमस्तथा ॥४०॥
अस्माकं प्रमुखे स्थातुं सर्वे बिभ्यन्ति सर्वदा। विष्णोर्दोषस्तु नास्त्यत्र कारणे राक्षसेश्वरौ ॥४१॥
देवानामेव दोषेण विष्णोः प्रचलितं मनः। तस्मादद्यैव सहिताः सर्वसैन्यसमावृताः ॥४२॥
देवानेव जिघांसामो येभ्यो दोषः समुत्थितः। इति ते श्याम सम्मन्त्र्य सर्वोद्योगेन राक्षसाः ॥४३॥
युद्धाय निर्ययुः सर्वे महाकाया महाबलाः। स्यन्दनैर्वारणैश्चैव हयैश्च करिसन्निभैः ॥४४॥
खरैर्गोभिरथोष्ट्रैश्च शिशुमारैर्भुजङ्गमैः। मकरैः कच्छपैर्मीनैर्विहङ्गैर्गरुडोपमैः ॥४५॥
सिंहैर्व्याघ्रैर्वराहैश्च सृमरैश्चमरैरपि। त्यक्त्वा लङ्कां गताः सर्वे राक्षसा बलगर्विताः ॥४६॥
प्रयाता देवलोकाय निस्त्रासा देवशत्रवः। लङ्कायाः पर्ययं दृष्ट्वा या न लङ्कालयान्यथ ॥४७॥
भूतानि विमनस्कानि भयदर्शीनि सर्वशः। प्रयाता राक्षसास्तूर्णं देवलोकं प्रयत्नतः ॥४८॥
राक्षसा देवलोकेन दैवतान्युपचक्रमुः। भौमाश्चैवान्तरिक्षाश्च कालाज्ञप्ता भयावहाः ॥४९॥
उत्पाता राक्षसेन्द्राणामभावाय समुत्थिताः। अस्थीनि मेघा ववृषुरुष्णशोणितमेव च ॥५०॥

वेलां समुद्रश्चोत्क्रान्तश्चेलुश्चाप्यथ भूधराः । अट्टहासा विमुञ्चन्तो घननादसमस्वनाः ॥५१॥
वासन्त्युच्चैः शिवास्तत्र दारुणं घोरदर्शनाः । सम्पतन्त्यथ भूतानि दृश्यन्ते च यथाक्रमम् ॥५२॥
गृध्रचक्रं महच्चात्र प्रज्ज्वलाङ्गारिभिर्मुखैः । रक्षोगणस्योपरिष्टात् परिभ्रमति कालवत् ॥५३॥
कपोता रक्तपादाश्च शारिका विद्रुता ययुः । हाहा वासन्ति तत्रैव विडाला द्विपपादिकाः ॥५४॥
उत्पातांस्ताननादृत्य राक्षसा बलगर्विताः । ययुरेव विदित्वा तु मृत्युपाशवशं गताः ॥५५॥
माल्यवांश्च सुमाली च माली च सुमहाबलः । पुरःसरा राक्षसानां ज्वलिता इव पावकाः ॥५६॥
माल्यवन्तं च ते सर्वे माल्यवन्तमिवाचलम् । निशाचराश्चाश्रयन्ति धातारमिव देवताः ॥५७॥
तद्बलं राक्षसेन्द्राणां महाभ्रमिव नादितम् । जयेप्सया देवलोकं ययौ मालिवशे स्थितम् ॥५८॥
राक्षसानां समुद्योगं तं तु नारायणः प्रभुः । देवदूतादुपश्रुत्य चक्रे युद्धे तदा मनः ॥५९॥
ससर्जायुधतूणीरौ वैनतेयोपरिस्थितः । राक्षसानामभावाय ययौ तूर्णतरं प्रभुः ॥६०॥
सुपर्णपृष्ठे प्रबभौ श्यामः पीताम्बरो हरिः । काञ्चनस्य गिरेः शृङ्गे सतडित्तोयदो यथा ॥६१॥
ससिद्धदेवर्षिमहोरगेश्वरैर्गन्धर्वयक्षैरुपगीयमानः । समाससादामरशत्रुसैन्यं गदासिशार्ङ्गायुधचक्रपाणिः ॥६२॥
सुपर्णपक्षानिलधूतपत्रं भ्रमत्पताकं परिकीर्णशस्त्रम् । चचार तद्राक्षसराजसैन्यं चलोपलं नीलमिवाचलाग्रम् ॥६३॥
ततश्च ते शोणितमांसरूषितैर्युतान्तवैश्वानरतुल्यविग्रहाः । निशाचराः सम्परिवार्य माधवं वरायुधैर्निर्बिभिदुः सहस्रशः ॥६४॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विंशतितमोऽध्यायः ॥२०॥

---

अगस्त्यले भने – तिनीहरूले बाधा दिइएका देवताहरू र तपस्या नै धन भएका मुनिहरू पनि डरले देवताका पनि देवता महादेवको शरणमा गए। भुईंमा लौरो झैं भई प्रणाम गरेर डरले रोक्किई रोक्किई भन्न थाले – हे भगवान् ! सुकेशका छोराहरूद्वारा बाधा दिइएका र मारपीट खाएका पनि छौं। शत्रुलाई नाश गर्ने हे प्रजाका अध्यक्ष ! सबै प्रजाहरू बाधा दिइएका छन्। हे प्रभु ! तिनीहरू राक्षसहरूद्वारा शरण चाहने र शरण लिनैपर्ने पनि बनाइए ॥३॥ स्वर्गबाट इन्द्र खसालिए। जो स्वर्गमा देवताहरू झैं खेल्दछन् र वर दिनाले सेखी गर्ने तिनीहरूको अगि पछि लाग्नेछन्, ती राक्षसहरू हर्षले म विष्णु हुँ, मै वरुण हुँ, चन्द्र र सूर्य पनि मै हुँ, लडाईंमा यस्तो भन्छन्। त्यसकारण डरले पिरिएका हामीहरूलाई अभय दिनुहोस्। भयङ्कर शरीर लिएर ती देवताका काँडालाई मार्नुहोस् ॥१–६½॥

सबै देवताहरूले यति भनिएका नीललोहित शिवले सुकेशपट्टि सङ्केत गरेर देवताहरूलाई भन्नुभयो – म तिनीहरूलाई मार्दिनँ। ती दैत्यहरू मैले मार्न सकिने होइनन्, तर जसले तिनीहरूलाई मार्छ, त्यो मन्त्र भन्छु। विष्णुले तिनीहरूलाई मार्नुहुनेछ। यही उद्योग अगाडि राखेर देवताहरू जाऊन्। त्यसपछि तिनीहरूले महेश्वरलाई जयशब्दद्वारा सम्मान गरेर राक्षसको डरले भुतुक्कै भएका ती विष्णुको नजिकमा गए। खूब सम्मानपूर्वक शङ्ख, चक्र, गदा लिने विष्णुलाई प्रणाम गरेर सुकेशका छोराहरूले पिरिएका तिनीहरूले हडबडाएजस्तो बोली बोले। हे देव ! सुकेशका त्रेताग्नि जस्ता तीनवटा पुत्रहरूले वरदानले गर्दा आक्रमण गरेर हामी देवताहरू अधीन गराइयौं। त्रिकूटको चुचुरामा रहेको लङ्का नामको शहर छ। त्यहाँ रहेर राक्षसहरूले सबै हामीलाई बाधा गर्छन्। हे मधुसूदन ! तपाईंले हाम्रो भलोका लागि तिनीहरूलाई मार्नुहोस्। चक्रले काटिएको मुखकमल भएका तिनीहरूलाई यमराज कहाँ भनि दिनुहोस्। डरमा हामीहरूलाई अभय दिने तपाईंजस्तो अरू कोही छैन। सूर्यले झैं हाम्रो डर हटाउनुहोस् ॥७–१५½॥

ती देवताहरूले यस्तो भनिएका देवताका पनि देवता जनार्दनले डरले भुतुक्क भएकालाई अभय दिँदै देवताहरूलाई भन्नुभयो – शिवको वरले सेखी गर्ने सुकेश राक्षसलाई जान्दछु। त्यसका तीनवटै छोराहरूलाई चिन्दछु। तिनीहरूमा जेठो माल्यवान् हो। मर्यादा नाघेका ती अधम राक्षसहरूलाई लडाईंमा मार्नेला। हे देवता हो ! चिन्ता नगर। समर्थ विष्णुले यति भनिएका ती सबै देवताहरूखुसी हुँदै जनार्दनको प्रशंसा गर्दै आआफ्नो बस्ने ठाउँमा गए। त्यो माल्यवान् राक्षसले देवताहरूको उद्योग सुनेर ती आफ्ना साह्रै मन परेका दुई भाइलाई यो कुरा भन्यो ॥१६–२०॥

देवता र मुनिहरूले पनि हामीलाई मार्न खोजी शङ्कर कहाँ गएर शिवजीलाई भने – देवताको वरदानबाट खूब उद्धत भएका, सधैं युद्धमा लागिरहने, पाइला पाइलामा डर लाग्दो रूप भएका सुकेशका छोराहरू हामीलाई बाधा गर्छन्। हे उमापति ! राक्षसहरूले दबाइएका छँदा ती दुरात्माहरूको डरबाट हामी आफ्नो धर्ममा रहन नसक्ने भयौं। हे त्रिलोचन ! यसैले हाम्रो हितका लागि तिनीहरूलाई मार्नुहोस्। हे डढाउनेहरूमा श्रेष्ठ ! राक्षसहरूलाई हुंकार गरेर नै डढाउनुहोस्। देवताले यस्तो भनेको सुनेर अन्धकलाई मार्ने शिवले हात र टाउको हल्लाउँदै भन्नुभयो। हे देवता हो ! ती सुकेशका छोराहरू लडाईंमा मैले मार्न

नसकिने छन्। जसले तिनीहरूलाई मार्नेछ, त्यो मन्त्र भन्छु। चक्र र गदा हातमा लिने पीताम्बरधारी र जनतालाई सुख दिने जो श्रीमान् हरि नारायण हुनुहुन्छ, उहाँकै शरणमा पर्नुहोस्॥२१-२७½॥

शिवबाट यो मन्त्र पाएर तिनीहरूले कामदेवका शत्रुलाई अभिवादन गरी नारायणको मन्दिरमा पुगेर उहाँलाई सबै निवेदन गरे। हे देवता हो ! नडराउनुहोस् देवताका शत्रु तिनलाई मार्नेछु भनी इन्द्रादि देवताहरूलाई नारायणले भन्नुभये। हे राक्षसहरू ! डरले आत्तिएका देवताहरूको प्रार्थनाले गर्दा हरिले हामीलाई मार्ने अठोट गरे। अहिले जे उचित छ, त्यो विचार गर। हिरण्यकशिपुको मृत्यु र अरू देवताको रीस गर्नेहरूको मृत्यु भयो। त्यस्तै नमुचि, कालनेमि, वीर संह्लाद, राधेय, बहुमायी, धार्मिक लोकपाल, यमल अर्जुन, हार्दिक्य शम्भु र निशुम्भ, सत्त्व भएका र धेरै बलिया असुर र दानवहरू सबै लडाईंमा पुगेर हारे रे भन्ने सुनिन्छ। सबै सय यज्ञ गर्ने र सबै माया जान्ने सबै हजारौं नारायणले मारिए। यो जानेर सबैको असल गर्न अहिले योग्य छौ॥२८-३५॥

हे राक्षस हो ! यसमा विष्णुको दोष छैन। देवताहरूकै दोषले विष्णुको मन चल्यो। जसले हामीलाई मार्न चाहन्छ, ती विष्णुलाई जित्न कठिन छ। सुमाली र मालीले माल्यवान्को कुरा सुनेपछि दुई अश्विनीकुमारले इन्द्रलाई झैं दाजुलाई भने – स्वाधीनता पायौं, दान दियौं, यज्ञ गर्‍यौं, ऐश्वर्यको पनि पालना गर्‍यौं, रोग नलाग्ने आयु पायौं र कुलोचित धर्म पनि पायौं। चलाउन नसकिने देवसागरलाई शस्त्रैशस्त्रले ढाकेर हामीले बेजोड शत्रुहरूलाई जित्यौं, मृत्युको डरै गरिएन। नारायण, रुद्र, इन्द्र र यम पनि हाम्रा अगाडि टिक्न सधैं डराउँछन्। यसमा विष्णुको दोष छैन। हे राक्षसेश्वर हो ! देवताहरूकै दोषले विष्णुको मन चल्यो। त्यसैले आजै नै सबै सेनाहरूले घेरिएर जसबाट दोष उत्पन्न भएको हो, तिनै देवताहरूलाई मारौं॥३६-४२½॥

हे श्याम ! यसरी सबै उद्योगद्वारा विचार गरेर ठूलो शरीर भएका धेरै बलिया ती राक्षसहरू युद्धका लागि निस्किए। रथ हात्ती र हात्ती जस्ता घोडा, गधा, गाई, रथ र उँट, सौंस, सर्प, मकर, कछुवा, माछा, गरुड जस्ता चरा, सिंह, बाघ, बँदेल, सृमर र चौंरीहरूका साथ बलले सेखी गर्ने सबै राक्षसहरू लङ्का छोडेर गए। लङ्काका घेरा र लङ्काको भएजति घरहरू हेरेर देवताका निडर शत्रुहरू देवलोकका लागि हिंडे। सबैतिरबाट डराएका र खिन्न मन भएका प्राणीलाई देखेर छिट्ये-छिट्ये राक्षसहरू मेहनतसाथ देवलोकतिर गए॥४३-४८॥

देवलोक गएर राक्षसहरूले देवताहरूमाथि हमला गरे। डरलाग्दा र काललाई बोलाउने जस्ता भौम र अन्तरिक्ष उत्पातहरू राक्षसहरूका नाशका लागि आइपरे, मेघले हाड र तातो रगत नै बर्साए। समुद्रले तीरलाई नाघ्यो, मेघको आवाज जस्तो शब्द गर्ने पहाडहरू अट्टहास छोड्दै चले। त्यहाँ देख्दै डरलाग्दा स्यालहरू डरलाग्दो किसिमले जोडसँग कराए। क्रमैसँग ढलेका प्राणीहरू पनि देखिए। राक्षसहरूको माथिपट्टि काल झैं बल्दो अँगार जस्तो मुख भएका गिद्धहरूको ठूलो चक्कर घुम्छ। परेवा, सुगा र मैनाहरू भागे। बिराला र द्विपपादिका हा हा गरेर त्यहीं बस्छन्। ती उत्पातहरूलाई जानेर पनि वास्तै नराखी मृत्युको पाशमा गएका राक्षसहरू बलले मात्तिएका हुँदा गए॥४९-५५॥

बलिया माल्यवान्, सुमाली र माली बलेको आगो झैं राक्षसहरूको अघि लागे। देवताहरूले ब्रह्माजीको आश्रय लिए झैं माल्यवान् पर्वत जस्तो माल्यवान्मा ती सबै राक्षसहरूले आश्रय लिएका थिए। ठूलो मेघको जस्तो शब्द गर्ने मालीको वशमा रहेका राक्षसहरूको त्यो सेना विजयको इच्छाले देवलोक गयो। राक्षसहरूको त्यो उद्योग देवदूतबाट सुनेर नारायणले युद्धमा मन गर्नुभयो र हतियार तथा ठोक्रो बनाउनुभयो। त्यसपछि गरुडमाथि चढेका नारायण चाँडै नै राक्षसहरूलाई मार्नका लागि जानुभयो॥५६-६०॥

सुवर्णाचलको चुचुरोमा बिजुलीसहितको बादल झैं गरुडको पछाडि रहेका श्याम वर्णका पीताम्बर हरि उड्नुभयो। सिद्ध, देवर्षि, ठूला सर्पराज, गन्धर्व र यक्षहरूले गान गरिएका, गदा, तरबार, शार्ङ्ग हतियार र चक्र हातमा लिनुभएका ती विष्णु देवताका शत्रुसेना कहाँ पुग्नुभयो। गरुडको पखेटाको हावाले वाहन कम्पित भएको, पताकाहरू फरफराएको, शस्त्रहरू छरिएको राक्षसको त्यो सैन्य कालो पर्वत चले झैं गरेर प्रस्थान गर्‍यो। त्यसपछि रगत र मासु मुछिएका श्रेष्ठ हजारौं हतियार हरूद्वारा प्रलयकालको अग्नि झैं विरोध गर्ने ती राक्षसहरूले माधवलाई घेरेर प्रहार गर्न लागे॥६१-६४॥

स्कन्दपुराण अन्तर्गत हिमवत्खण्डमा नेपालमाहात्म्यको बीसौं अध्याय पूर्ण भयो।

# अथ एकविंशोऽध्यायः

मालीराक्षसवधः (मालीनामक राक्षसको वध)

अगस्त्य उवाच

नारायणगिरिं ते तु गर्जन्तो राक्षसाम्बुदाः। बाणवर्षेण सिषिचुर्वर्षेणेवाद्रिमम्बुदाः ॥१॥
श्यामावदातो विष्णुश्च नीलैर्नक्तञ्चरोत्तमैः। रेजेऽञ्जनगिरिः श्रीमान् वर्षद्भिरिव तोयदैः ॥२॥
शलभा इव केदारं मशका इव पर्वतम्। हरिं विशन्ति स्म शरा लोकास्तमिव पर्यये ॥३॥
स्यन्दनैः स्यन्दनगता गजैर्गजधुरं गताः। अश्वारोहाः सदश्वैश्च पदाताश्च पदातिभिः ॥४॥
राक्षसेन्द्रा गिरिनिभाः शरशक्त्यृष्टितोमरैः। निरुच्छ्वासं हरिं चक्रुः प्राणायामा इव द्विजम् ॥५॥
निशाचरैर्हन्यमानो मीनैरिव महातिमिः। शार्ङ्गमात्रस्य गात्राणि राक्षसानां महाहवे ॥६॥
शरैः कर्णायतोत्सृष्टैर्वज्रकल्पैर्महाजवैः। चिच्छेद तिलशो विष्णुः शतशोऽथ सहस्रशः ॥७॥
विद्राव्य शरवर्षं तद्वर्षं वायुरिवोत्थितम्। पाञ्चजन्यं महाशङ्खं दध्मौ स पुरुषोत्तमः ॥८॥
सोऽम्बुजो हरिणा ध्मातः सर्वप्राणेन शङ्खराट्। ननाद भीमनिर्ह्रादो युगान्तजलदो यथा ॥९॥
शङ्खराजरवः सोऽथ त्रासयामास राक्षसान्। मृगराजरवोऽरण्ये समदानिव कुञ्जरान् ॥१०॥
न शेकुरश्वाः संस्थातुं विमदाः करिणोऽभवन्। स्यन्दनेभ्योऽपतन् सद्यः शङ्खशब्देन मोहिताः ॥११॥
शार्ङ्गचापविनिर्मुक्ता वज्रतुल्याननाः शराः। विदार्य तानि रक्षांसि सुपुङ्खा विविशुः क्षितिम् ॥१२॥
भिद्यमानाः शरैश्चान्यैर्नारायणधनुश्च्युतैः। निपेतू राक्षसा भीताः शैला वज्रहता इव ॥१३॥
गण्डानि वरनागानां विष्णुबाणक्षतानि च। असृक् क्षरन्ति धाराभिः स्वर्णराशिमिवाचलाः ॥१४॥
शङ्खराजवरश्चापि शार्ङ्गचापवरोऽपि च। ग्रसन्ते वैष्णवा बाणास्तेषां ध्वजधनूंषि च ॥१५॥
तेषां वरान् शरानूरून् शिरोध्वजधनूंषि च। रथान् पताकाँस्तूणीराँश्चिच्छेद स हरिः शरैः ॥१६॥
सूर्यादिव मयूखो द्याः सागरादिव चोर्मयः। पातालादिव नागेन्द्रा वार्योघा इव चाम्बुदात् ॥१७॥
तथा गाढविनिर्मुक्ता शार्ङ्गान्नारायणेरिताः। निर्धावन्ति शरास्तूर्णं शतशोऽथ सहस्रशः ॥१८॥
शरभेण यथा सिंहः सिंहेन द्विरदो यथा। द्विरदेन यथा व्याघ्राः शार्दूलेनेव द्वीपिनः ॥१९॥
द्वीपिना च यथा श्वानः शुना मार्जारका यथा। माजरिण यथा सर्पा भुजङ्गैर्मूषिका यथा ॥२०॥
तथा ते राक्षसाः सर्वे विणुना प्रभविष्णुना। द्राविता विदिशश्चैव शायिताश्च महीतले ॥२१॥
राक्षसानां सहस्राणि निहत्य मधुसूदनः। वारिजं ध्मापयामास खे वायुरिव तोयदम् ॥२२॥
नारायणरणध्वस्तं शङ्खनादप्रविह्वलम्। ययौ तु लङ्काभिमुखं प्रभग्नं राक्षसं बलम् ॥२३॥
प्रभग्ने राक्षसबले नारायणशराहते। सुमाली शरजालेन आजघान रणे हरिम् ॥२४॥
स तु तं छादयामास नीहार इव भास्करम्। राक्षसाः सत्त्वसम्पन्नाः पुनर्धैर्यं समादधुः ॥२५॥
तदैव तस्य तत्क्रोधाद्राक्षसो बलदर्पितः। महानादं प्रकुर्वाणो राक्षसान् जीवयन्निव ॥२६॥
उत्क्षिप्य स्वर्णाभरणं करं करमिव द्विपः। ननाद राक्षसो हर्षात् सतडित्तोयदो यथा ॥२७॥
अथ तानर्दतः सङ्ख्ये शिरो ज्वलितकुण्डलम्। चिच्छेद यन्तुस्तुरगाः प्रोद्भ्रान्तास्तस्य रक्षसः ॥२८॥
अश्वैरुद्भ्राम्यः ततस्तैः सुमाली च निशाचरः। इन्द्रियार्थैः परिभ्रान्तैर्वृत्तिहीनः पुमानिव ॥२९॥
स तु तान् सन्नियम्याश्वानिन्द्रियार्थान् यथा यतिः। स्थितोऽभूदचलो भूत्वा स्थापयित्वा गतो रथम् ॥३०॥
ततो विष्णुं महाबाहुं प्रतपन्तं रणाजिरे। माली ह्यभ्यद्रवद्वीरः प्रगृह्य सशरं धनुः ॥३१॥
मालीचापच्युता बाणाः कार्त्तस्वरविभूषिताः। विविशुर्हरिमासाद्य क्रौञ्चं पत्ररथा इव ॥३२॥
अर्दमानः शरैः सोऽथ मालित्यक्तैः सहस्रशः। न चुक्षुभे रणे विष्णुर्जितेन्द्रिय इवाधिभिः ॥३३॥
ततो मौर्वीस्वनं कृत्वा भगवान् भूतभावनः। मालिनं प्रति बाणौघान् ससर्जासिगदाधरः ॥३४॥
ते मालिदेहमासाद्य वज्रविद्युत्प्रभाः शराः। बहुरक्तं पपुस्तत्र नागा इव पुराऽमृतम् ॥३५॥
मालिनं विमुखं कृत्वा शङ्खचक्रगदाधरः। शितैः शरैर्ध्वजं चापं वाजिनश्चाप्यपातयत् ॥३६॥
गदामादाय विरथस्ततो माली निशाचरः। आपुप्लुवे गदापाणिर्गिर्यग्रादिव केशरी ॥३७॥

स तदा गरुडं सङ्ख्य ईशानं वै यथाऽन्धकः। जघान शिरसि क्रुद्धो वज्रेणेव इवारिहा ॥३८॥
गदयाभिहतस्तेन मालिना गरुडस्तदा। रणात् पराङ्मुखं देवं कृतवान् वेदनातुरः ॥३९॥
पराङ्मुखीकृते देवे गरुडेन पतत्रिणा। बभूव रक्षसां नादः सिंहानामिव गर्जताम् ॥४०॥
रक्षसां गर्जतां श्रुत्वा नादं हरिहयानुजः। पराङ्मुखोऽत्युत्ससर्ज चक्रं मालिजिघांसया ॥४१॥
तत् सूर्यमण्डलाभासं प्रभया भासयन् नभः। कालचक्रनिभं चक्रं मालिशीर्षमपातयत् ॥४२॥
तच्छिरो राक्षसेन्द्रस्य चक्रकृत्तं विभीषणम्। पपात रुधिरोद्गारि पुरा राहुशिरो यथा ॥४३॥
ततो देवः सुसंहृष्टैः सर्वप्राणसमीरितः। सिंहनादस्ततो मुक्तः साधु देवेति वादिभिः ॥४४॥
मालिनं निहतं दृष्ट्वा सुमाली माल्यवानपि। सबलौ शोकसन्तप्तौ लङ्कां प्रति विधावितौ ॥४५॥
गरुडस्तु समाश्वस्तः सन्निवृत्य यथामनः। राक्षसान् पातयामास पक्षपातेन कोपितः ॥४६॥
नारायणोऽप्याशुवरेषुभिःप्रभुर्विदारयामासधनुःप्रसूतैः।नक्तञ्चरान्मुक्तविधूतकेशान्विश्वस्तचापासिनिवृत्तबाणान्॥४७॥
छिन्नातपत्रं पतमानशस्त्रं शरैः समन्तादतिभिन्नदेहम्। विनिर्गतास्त्रं भयलोलनेत्रं बलं तदुन्मत्तनिभं बभूव ॥४८॥
संबाध्यमाना हरिवाणजालैः सुरागजालानि समुत्सृजन्तः। धावन्ति नक्तञ्चरकालमेघा वायुप्रणुन्ना इव कालमेघाः ॥४९॥
चक्रप्रहारैर्विनिकृत्तदेहाः सञ्चूर्णिताश्चाशु गदाप्रहारैः। असिप्रहारैर्बहुधा विभक्ताः पतन्ति शैला इव राक्षसेन्द्राः ॥५०॥
चक्रोत्कृत्तास्यकमला गदासञ्चूर्णितोरसः। लाङ्गलाकर्षितग्रीवाः सुशरैर्भिन्नमस्तकाः ॥५१॥
केचिच्चैवासिना छिन्ना तथाऽन्ये शरपीडिताः। निपेतुरम्बरात् तूर्णं राक्षसाः सागराम्भसि ॥५२॥
ततोऽम्बरं प्रच्युतहारकुण्डलैर्निशाचरैर्नीलबलाहकोपमैः। निपात्यमानैर्ददृशे निरन्तरं विसर्प्यमाणैरिव नीलपर्वतैः ॥५३॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये मालिवधो नाम एकविंशोऽध्यायः ॥२१॥

---

अगस्त्यले भनुभयो – पर्वतलाई वर्षाले झैँ नारायणरूपी पर्वतलाई गर्जने राक्षसरूपी मेघले बाणको वर्षाले सेचन गरे। बर्सने मेघहरूद्वारा गाजलको पर्वत झैँ नै काला र डरलाग्दा राक्षसहरूद्वारा काला र राम्रा श्रीमान् विष्णु शोभित भए। खेतमा सलहले झैँ र पर्वतलाई लामखुट्टेहरूले झैँ प्रलयकालमा संसारविलय भए झैँ बाणहरूले हरिलाई छोपे। रथीले रथ चढ्नेहरूसँग हात्ती चढ्नेले हात्ती चढ्नेसँग, घोडा चढ्नेले घोडा चढ्नेसँग र पदातिले पैदल हिँड्नेसित। शर, शक्ति, तरबार र तोमरहरू भएका पर्वत जस्ता राक्षसहरूले र प्राणायाम गरेका ब्राह्मणलाई झैँ हरिलाई सासै फेर्न नसक्ने जस्तो बनाए ॥१-५॥

ठूलो एक प्रकारको तिमिमाछलाई माछाहरूले झैँ राक्षसहरूको ठूलो लडाइँमा राक्षसहरूद्वारा विष्णुको शरीरमा प्रहार गरियो। कानसम्म छोडिएका वज्र जस्ता र खूब वेग भएका शरहरूद्वारा विष्णुले राक्षसका जीउहरू तिल जस्तो गरेर सयौँ र हजारौँ टुक्रा पारेर काट्नुभयो। वायुझैँ उठेको त्यो शरको वर्षाद्वारा पुरुषोत्तमले ठूलो पाञ्चजन्य शङ्ख फुक्नुभयो। भए भरका सासले हरिले फुकिएको त्यो ठूलो शङ्खले डर लाग्दो शब्द गर्ने युगान्तकारी मेघले झैँ आवाज गऱ्यो। मद भएका हात्तीलाई जङ्गलमा सिंहको शब्दले झैँ त्यो श्रेष्ठ शङ्खको शब्दले राक्षसहरूलाई तर्सायो। शङ्खको शब्दले मोहित भएका घोडाहरू अड्न सकेनन्, मद नभएका हातीहरू तुरुन्तै रथबाट खसे ॥६-११॥

शार्ङ्ग धनुबाट छोडिएका, वज्रको जस्तो अग्रभाग भएका र पुङ्ख राम्रो भएका शरहरू ती राक्षसहरूलाई छेडेर पृथ्वीमा पसे। नारायणको धनुबाट खसेका कठोर शरहरूले छेडिएका डरछेरुवा राक्षसहरू वज्रले हानिएका पर्वतझैँ खसे। विष्णुको बाणले चोट लगाइएका ठूला हात्तीहरूका छालाबाट पर्वतबाट गेरु खसेझैँ रगत चुहियो ॥ श्रेष्ठ शङ्ख र श्रेष्ठ धनु शार्ङ्गले अनि विष्णुका बाणहरूले तिनीहरूका ध्वजा र धनुहरूलाई निलिदिए। विष्णुले तिनीहरूका श्रेष्ठ बाण, तिघ्राहरू, शिर, ध्वजा, धनुहरू, रथहरू, पताकाहरू र ठोक्राहरूलाई शरद्वारा काटे। सूर्यबाट आकाशीय किरण झैँ, समुद्रबाट छालहरू झैँ,पातालबाट नागराजहरू झैँ र मेघबाट आँधी झैँ नारायणको धनुबाट गाढासँग छोडिएका सयौँ हजारौँ बाणहरू चाँडो चाँडो दौडिए। शरभले सिंहलाई झैँ, सिंहले हात्तीलाई झैँ, हात्तीले बाघलाई झैँ बाघले चितुवालाई झैँ, चितुवाले कुकुरलाई झैँ, कुकुरले बिरालोलाई झैँ, बिरालोले सर्पलाई झैँ, सर्पले मुसालाई झैँ समर्थ विष्णुद्वारा सबै राक्षसहरू चारैतिर तितरबितर बनाइए र भुइँमा सुताइए ॥१२-२१॥

हजारौँ राक्षसहरूलाई मारेर मधुसूदनले वायुले मेघ बजाएझैँ शङ्ख बजाए। नारायणले लडाइँमा ध्वस्त पारिएको शङ्खको स्वरले गर्दा के गरौँ र कसो गरौँ भएको र छिन्नभिन्न भएको राक्षसहरूको सेना लङ्कातिर भाग्यो। नारायणको शरले हानिएको राक्षसको सेना तितरबितर भएपछि शरैशरद्वारा सुमालीले लडाइँमा हरिलाई हान्यो। कुहिरोले सूर्यलाई झैँ त्यसले हरिलाई ढाकिदियो। बल पाएका राक्षसहरूले फेरि धैर्य लिए। त्यसै बेला रीसले गर्दा बलले मात्तिएको राक्षसले राक्षसहरूलाई

बचाउँला झैं ठूलो शब्द गरी हात्तीले सुँड उभ्याए झैं सुनका गहना लगाएको हात उठाई हर्षले त्यस राक्षसले बिजुलीसहितको मेघले झैं शब्द गऱ्यो ॥२२-२७॥

अनि हरिले तिनीहरूलाई लडाईंमा ढलमल्याउँदा चम्किलो कुण्डल भएको सारथिको टाउको काट्नुभयो। त्यसका घोडाहरू बेकाबू भए, काबूमा नरहेका घोडाहरूले गर्दा हडबडाएको सुमाली राक्षस इन्द्रियका प्रयोजनहरूसमाप्त भएर वृत्ति नभएको पुरुषजस्तो भयो। त्यसो त ती घोडाहरूलाई योगीले इन्द्रियहरूलाई झैं नियममा राखेर त्यो अडिग भएर रह्यो, अनि रथ राखेर गयो। त्यसपछि लडाईंमा रोक्किएका लामा हात भएका विष्णुतिर शर भएको धनु लिएर शब्द गर्दै वीरमाली दौडियो। मालीले छोडिएका सुनले सिंगारिएका बाणहरू कन्याङ् कुरुङ्मा पत्ररथ पसे झैं हरिको शरीरभित्र पसे। मालीले छोडिएका हजारौं शरहरूले दारिएका विष्णु इन्द्रिय जितेको मानिस मानसिक दुःखबाट नहडबडाए झैं हड्बडाउनुभएन ॥२८-३३॥

त्यसपछि तरबार र गदा लिएका भूतभावन विष्णुले ताँदोको शब्द गरेर मालीतिर बाणहरू छोड्नुभयो। वज्रको जस्तो चम्किलो कान्ति भएका ती शरहरूले मालीको शरीरमा पुगेर पहिल्यै नागहरूले अमृत पिए झैं गरी धेरै रगत पिए। शङ्ख, चक्र, गदा लिने विष्णुले मालीलाई विमुख गरेर तीखा शरद्वारा ध्वजा, धनु र घोडाहरूलाई पनि खतम पारिदिए। अनि रथ नभएको र गदा हातमा लिएको माली राक्षस गदा लिएर पर्वतको टाकुराबाट सिंह झैं उफ्रियो। शत्रुलाई हान्ने त्यसले लडाईंमा शिवलाई अन्धक असुरले झैं वज्रले गरुडलाई टाउकामा हान्यो। त्यो मालीको गदाले हानेको वेदनाले आत्तिएका गरुडले लडाईंबाट विष्णुलाई पराङ्मुख गरिदियो ॥३४-३९॥

पक्षी गरुडले विष्णुलाई पिठ्यूँ फर्काइदिएपछि गर्जने सिंहहरूको जस्तो राक्षसहरूको स्वर भयो। गर्जने राक्षसहरूको स्वर सुनेर फर्किएका हरिले मालीलाई मार्ने इच्छाले चक्र प्रहार गर्नुभयो। सूर्यमण्डलसमान जस्तो प्रकाश भएको कालचक्र जस्तो त्यस चक्रले तेजले आकाश उजिल्याउँदै मालीको टाउको खसालिदियो। चक्रले राहुको टाउको जस्तै काटिएको राक्षसेन्द्रको त्यो अजङ्गको टाउको रगत छाद्दै खस्यो। त्यस अवसरमा देवताहरू हे विष्णुदेव ! हजुरले राम्रो गर्नुभयो भन्दै ठूलो स्वरले कराए ॥४०-४४॥

मालीलाई मारेको देखेर बलिया र शोकले पिरिएका सुमाली, माल्यवान् लङ्कातिर भागे। आश्वस्त भएका गरुडले मन माफिक रीसले पखेँटाले हानेर राक्षसहरूलाई लडाए। नारायणले पनि धनुबाट वर वर निस्केका वाणहरूद्वारा फुकेका कपाल हल्लाएका धनु, तरबार र बाणहरू ध्वस्त भएका राक्षसहरूलाई छिन्नभिन्न पारे। छाता काटिएको, शस्त्र खसेको, चारैतिरबाट देह टुक्रिएको अस्त्रहरू खत्तम भएको र डरले गर्दा चञ्चल आँखा भएको राक्षसहरूको त्यो सेना उन्मत्त जस्तो भयो। हरिका वाणजालले दुःख पाएका काला मेघजस्ता राक्षसहरू आफूले चाहेका कुराहरू छाडेर वायुले लखेटिएका काला बादल झैं दौडिए ॥४५-४९॥

चक्रको प्रहारले शरीर काटिएका गदाको भारले तुरुन्तै धुलोपिठो भएका र तरवारको चोटले धेरै प्रकारले टुक्रिएका राक्षसहरू पर्वत झैं लडे । चक्रले मुख काटिएका गदाले धुल्याइएका, हलोले घाँटी तानिएका र असल वाणहरूले टाउको फोरिएका त्यस्तै कोही तरबारले काटिएका र अरू बाणले पिरिएका राक्षसहरू तुरुन्तै आकाशबाट समुद्रको पानीमा खसे। त्यसपछि हार र कुण्डल खसेका, काला मेघ जस्ता र मारिएका राक्षसहरूले गर्दा हट्न लागेका नीला पर्वतहरू झैं आकाश देखियो ॥५०-५३॥

स्कन्दपुराण अन्तर्गत नेपालमाहात्म्यमा मालिवधनामको एक्काइसौं अध्याय पूर्ण भयो ॥

# अथ द्वाविंशोऽध्यायः

कुबेरस्य लङ्कावासवर्णनम्

(कुबेरको लङ्कावासको वर्णन)

अगस्त्य उवाच

हते माल्यबले तस्मिन् पद्मनाभेन पृष्ठतः। माल्यवान् स निवृत्तोऽथ वेलयेव महार्णवः ॥१॥
संरक्तनयनः कोपाच्चलन्मौलिर्निशाचरः। पद्मनाभमिदं प्राह वचनं परुषं तदा ॥२॥
नारायण न जानीषे क्षत्रधर्मं सनातनम्। अयुद्धमनसो यन्नो भवान् हन्ति यथेतरः ॥३॥
पराङ्मुखवधं पापं यः करोति महीतले। न हन्ता न हतः स्वर्गं लभते तेन कर्मणा ॥४॥
युद्धश्रद्धाऽथ वा तेऽस्ति यत्र शार्ङ्गगदाधरः। अयं स्थितोऽहं पश्यामि बलं दर्शय यत् तव ॥५॥

माल्यवन्तं स्थितं दृष्ट्वा माल्यवन्तमिवाचलम्। उवाच राक्षसेन्द्रं तं देवेन्द्रावरजो बली ॥६॥
युष्मत्तो भयभीतानां देवानामभयं मया। राक्षसोत्सादनाद्दत्तं तदेतदनुपाल्यते ॥७॥
प्राणैरपि प्रियं कार्यं देवतानां सदा मया। सोऽहं विनिहनिष्यामि रसातलगतानपि ॥८॥
देवमेवं ब्रुवाणं तु स तदा पुरुषोत्तमम्। शक्त्या बिभेद सङ्क्रुद्धो राक्षसेन्द्रो ननाद च ॥९॥
माल्यवद्भुजनिर्मुक्ता शक्तिर्घण्टाकृतस्वना। हरेरुरसि बिभ्राज मेघोपरि शतह्रदा ॥१०॥
ततस्तमेव निष्कृष्य शक्तिं शक्तिधरप्रियः। माल्यवन्तं समुद्दिश्य चिक्षेपाम्बुरुहेक्षणः ॥११॥
स्कन्दोत्सृष्टेव सा शक्तिर्गोविन्दकरनिःसृता। काङ्क्षन्ती राक्षसं प्रायान्महोल्केवाञ्जनाचलम् ॥१२॥
सा तस्योरसि विस्तीर्णे हारभाभिः प्रभासिते। अपतद्राक्षसेन्द्रस्य गिरिकूटे यथाऽशनिः ॥१३॥
तया भिन्नतनुत्राणः प्राविशद्विपुलं तमः। माल्यवान् पुनराश्वस्तस्तस्थौ गिरिरिवाचलः ॥१४॥
ततः कार्ष्णायसं शूलं कण्टकैर्बहुभिर्वृतम्। प्रतिगृह्याहनद्देवं स्तनयोरन्तरे दृढम् ॥१५॥
तथैव रणरक्तस्तु मुष्टिभिः सोऽरुणानुजम्। ताडयित्वा धनुर्मात्रमपक्रान्तो निशाचरः ॥१६॥
ततोऽम्बरे महाशब्दः साधु साध्वित्यथोत्थितः। आहत्य राक्षसो विष्णुं गरुडं यदताडयत् ॥१७॥
वैनतेयस्तदा क्रुद्धः पक्षवातेन राक्षसम्। व्युवाह बलवान् वायुः शुष्कपर्णचयं यथा ॥१८॥
द्विजेशपक्षवातेन वीक्ष्य ताडितमग्रजम्। सुमाली स्वबलैः सार्धं लङ्कामभिमुखो ययौ ॥१९॥
पक्षवातसमुद्धूतो माल्यवानपि राक्षसः। स्वबलेन समागम्य ययौ लङ्कां ह्रियाऽऽवृतः ॥२०॥
एवं ते राक्षसाः श्याम हरिणा लोकधारिणा। बहुशः समरे भग्ना बहुप्रबलनायकाः ॥२१॥
अशक्नुवंस्ततो विष्णुं प्रतियोद्धुं भयार्दिताः। त्यक्त्वा लङ्कां गताः सर्वे पातालं पन्नगालयम् ॥२२॥
सुमालिनं समासाद्य राक्षसं भृगुसत्तम। स्थितः प्रख्यातवीर्योऽयं वंशे शालकटङ्कटे ॥२३॥
कथिता राक्षसाश्चैते शालकटङ्कटाः। दशग्रीवादयः श्याम पौलस्त्या नाम राक्षसाः ॥२४॥
सुमाली माल्यवान् माली ये च तेषां पुरःसराः। सर्व एते महाभागा रावणाद्बलवत्तराः ॥२५॥
न चान्यो राक्षसां हन्ता सुरेष्वपि मुनीश्वर। ऋते नारायणाद्देवाच्छङ्खचक्रगदाधरात् ॥२६॥
भवाद्वा मुनिशार्दूल पार्वतीप्राणवल्लभात्। येषां मया तव मुनीश्वर राक्षसानामुत्पत्तिरद्य कथिता सकला यथावत्।
भूयो निबोध भृगुसत्तम रावणस्य जन्म प्रभावमतुलं बलवत्तरस्य ॥२७॥
स राक्षसो विष्णुभयार्दितस्तदा स्वपुत्रपौत्रैश्च समन्वितो बली।
चिरात् सुमाली व्यचरद्रसातलं ततस्तु लङ्कामवसद्धनेश्वरः ॥२८॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये द्वाविंशोऽध्यायः ॥२२॥

---

अगस्त्यले भने– विष्णुले पछाडिबाट माल्यवान्को त्यो सेना तीरद्वारा हानिएपछि ठूलो समुद्रझैं गरी त्यो माल्यवान् रोकियो। राता आँखा भएको र रीसले गर्दा यउको हल्लाएको राक्षसले विष्णुलाई यस्तो कठोर वचन भन्यो – हे नारायण ! सनातन छेत्रीको धर्म जान्दैनौ, जो युद्ध नचाहने छ त्यसलाई तिमी बाहेक अरूले त हान्दैन। पछाडि फर्केका लाई मार्ने पाप पृथिवीतलमा जसले गर्छ, त्यो मार्ने र पीठ फर्काएर भाग्दा मारिनेले पनि स्वर्ग पाउँदैन। अथवा शार्ङ्ग र गदा लिने तिम्रो लड्ने नै मन छ कि म अडिएरै हेर्छु। तिम्रो जे बल छ देखाऊ ॥१–५॥

माल्यवान् पर्वत झैं अडेको राक्षसराज त्यस माल्यवान्लाई देखेर इन्द्रका बलिया भाइ विष्णुले भन्नुभयो – राक्षसहरूलाई सखाप पारेर मैले तिमीहरूदेखि डराएका देवताहरूलाई अभय दिएँ, त्यो म पालना नै गर्छु। सधैं मैले देवताहरूलाई प्राणभन्दा पनि प्यारो गर्नुपर्छ। त्यही म पाताल पुगेका राक्षसहरूलाई पनि मार्नेछु। त्यस्ता भन्नुहुने पुरुषोत्तमदेवतामाथि रिसाएको त्यो श्रेष्ठ राक्षसले शक्तिले प्रहार गऱ्यो र गर्ज्यो पनि। माल्यवान्को हातबाट छोडिएको घण्टको जस्तो शब्द गर्ने शक्ति हरिको छातीमा मेघमाथि विजुली झैं गरी राम्रो देखियो। अनि त्यसै शक्तिलाई झिकी माल्यवान्लाई नै उद्देश्य गरेर शक्ति धारण गर्नेहरूका प्यारा कमलका जस्ता आँखा भएका विष्णुले प्रहार गर्नुभयो ॥६–११॥

स्वामी कार्तिकले छोडिए जस्तो गोविन्दको हातबाट निस्केको त्यो शक्ति ठूलो उल्काले गाजलको पर्वत जस्तो राक्षसलाई खोज्दै गयो। त्यस राक्षसराजको हारको कान्तिले उज्यालिएको चौडा छातीमा त्यो शक्ति पर्वतको चुचुरोमा वज्र

भैँ खस्यो। त्यसबाट कवच फोरिएकाएले राक्षसराज बेहोस भयो। फेरि माल्यवान् आश्वस्त भएर पर्वत भैँ अचल भएर रह्यो। त्यसपछि त्यसले धेरै काँढा भएको कालो फलामको बलियो शूल भिकेर छातीको बीचमा विष्णुलाई हान्यो। धनु मात्रै खोसिएको र लडाईंमा तत्पर भएको त्यस राक्षसले त्यसरी नै विष्णुलाई मुड्कीले बजाएर धनुबराबर भुईंमा पर सन्यो ॥१२-१६॥

विष्णुलाई हानेर गरुडलाई हानेपछि आकाशमा राम्रो राम्रो भन्ने ठूलो शब्द फैलियो। बलवान् वायुले सुकेको पातको थुप्रोलाई हुत्याए भैँ गरुडले रिसाएर पखेयका हावाद्वारा राक्षसलाई हुत्याइदिए। गरुडको पखेयको हावाद्वारा ताडना गरिएको दाजुलाई देखेर आफ्ना सेनाहरूका साथ सुमाली लङ्कातिर गयो। पखेयको हावाले उडाइएको माल्यवान् राक्षस पनि आफ्ना सेनाहरूसँग मिलेर लाज मान्दै लङ्कातिर गयो। हे श्याम ! यसरी धेरै नै बलिया नायकहरू भएका ती राक्षसहरू लोक पालन गर्ने हरिद्वारा लडाइमा भगाइए। त्यसपछि विष्णुलाई हराउन नसकेका र डरले आत्तिएका सबै राक्षस लङ्का छोडेर सर्पहरूको घर पातालमा गए ॥२२-२२॥

हे श्याम ! सुमाली राक्षसलाई पाएर प्रसिद्ध पराक्रम भएको माल्यवान्, शालकटङ्कट वंशमा प्रख्यात भएर रह्यो। श्याम यी सालकटङ्कय राक्षस भनिन्छन् र दश ग्रीवा आदि राक्षसहरू पौरस्त्य भनिन्छन्। सुमाली, माल्यवान्, माली अनि राक्षस शालकटङ्कट वंशका प्रसिद्ध पुरुष भनिन्छन् र दशग्रीव आदि राक्षसहरू पौलस्य भनिन्छन्। सुमाली, माल्यवान्, माली र अरू जो तिनीहरूको अगाडि लाग्ने थिए, यी सबै महाभागहरू रावणभन्दा बलिया थिए। हे मुनीश्वर ! शङ्ख, चक्र, गदा लिने नारायणलाई छोडेर अथवा पार्वतीका प्राणप्यारा शिवलाई छोडेर देवतामा पनि राक्षसलाई मार्न सक्ने अरू छैनन्। हे मुनीश्वर ! मैले तपाईंलाई राक्षसहरूको सम्पूर्ण उत्पत्ति जस्ताको तस्तै गरेर आज भनेँ। हे भृगुसत्तम ! बलवान् राक्षस रावणको जन्म र तुलना गर्न नसकिने प्रभावबारे फेरि मबाट सुन्नुहोस्। अनि विष्णुको डरले भुतुक्क भएको त्यो बलियो सुमाली राक्षस आफ्ना छोरा नातिहरूले युक्त भई धेरै कालदेखि पातालमा भौतारियो। त्यसपछि लङ्कामा कुबेरले शासन गरे ॥२३-२८॥

स्कन्दपुराणान्तर्गत हिमवतखण्डमा नेपाल महात्म्यको बाइसौं अध्याय पूर्ण भयो ॥

## अथ त्रयोविंशोऽध्यायः

रावणजन्मकथा (रावषको जन्मको कथा)

अगस्त्यमुनिरुवाच

कस्य चित् त्वथ कालस्य सुमाली स तु राक्षसः। नीलजीमूतसङ्काशस्तप्तकाञ्चनसन्निभः ॥१॥
आदाय कन्यां रुचिरां विना पद्ममिव श्रियम्। राक्षसेन्द्रः स तु तदा विचरन् वै महीतले ॥२॥
गच्छन्तं गगनेऽपश्यत् पुष्पकेण धनेश्वरम्। पितरं द्रष्टुकामं च मातरं च निशाचरः ॥३॥
तं दृष्ट्वाऽनलसङ्काशं विमानं पावकोपमम्। हितार्थं चिन्तयामास राक्षसानां निशाचरः ॥४॥
किं नु कृत्वा भवेच्छ्रेयो वर्धमहि कथं वयम्। सुतां विश्रवसे दद्यां राक्षसीं वरवर्णिनीम् ॥५॥
स तु राक्षसशार्दूलः शार्दूलसमविक्रमः। अथाब्रवीत् सुतां तां तु नैकसीं किल नामतः ॥६॥
पुत्रि प्रदानकालस्ते यौवनं चातिवर्तते। त्वत्कृते च वयं सर्वे यन्त्रिता धर्मबुद्धयः ॥७॥
त्वयि पुत्रसमायुक्ता इच्छा सम्पत्स्यतेऽचिरात्। त्वं हि सर्वगुणोपेता श्रीरपद्मेव नः कुले ॥८॥
प्रत्याख्यानाच्च भीतैस्त्वं नासुरैर्व्रियसे शुभे। न ज्ञायते वरः पुत्रः कन्यानां चारुदर्शनः ॥९॥
कन्या पितृणां दुःखं हि सर्वेषां मानकारिणाम्। मातुः कुलं पितुश्चैव यत्र कन्या प्रदीयते ॥१०॥
कुलत्रयं यदा कन्या संशयस्थं करोति हि। सा त्वं मुनिवरं श्रेष्ठं प्रजापतिकुलोद्भवम् ॥११॥
गच्छ विश्रवसं पुत्रि पौलस्त्यं वरय स्वयम्। ईदृशास्ते भविष्यन्ति पुत्राः पुत्रि न संशयः ॥१२॥
तेजसा भास्करोदग्रा यादृशोऽयं धनेश्वरः। सा तु तद्वचनं श्रुत्वा कन्यका पितृगौरवात् ॥१३॥
गत्वाऽऽश्रमपदं तस्थौ यत्र तप्यति विश्रवाः। एतस्मिन्नन्तरे श्याम पुलस्त्यतनयो द्विजः ॥१४॥
अग्निहोत्रमुपातिष्ठच्चतुर्थ इव पावकः। सा तु तं दारुणं कालमबुध्वा पितृगौरवात् ॥१५॥
उपावृत्याग्रतस्तस्य चरणेऽधोमुखी स्थिता। स तु तां वीक्ष्य धर्मात्मा पूर्णचन्द्रनिभाननाम् ॥१६॥
अब्रवीत् परमोदारो दीप्यमान इवौजसा। भद्रे कस्यासि दुहिता कुतो वा त्वमिहागता ॥१७॥
किं कार्यं कस्य वा हेतोस्तत्त्वतो ब्रूहि तच्छुभे। एवमुक्त्वा तु सा कन्या कृताञ्जलिरथाब्रवीत् ॥१८॥

राक्षसीं विद्धि मां ब्रह्मन् शासनात् पितुरागताम्। नैकसीमिति नाम्ना वै शेषं त्वं ज्ञातुमर्हसि ॥१९॥
तपःप्रभावेण मुने यदर्थमहमागता। ततो गत्वा मुनिर्ध्यानं वाक्यमेतदुवाच ह ॥२०॥
विज्ञातं ते मया भद्रे कारणं यन्मनोगतम्। सुताभिलाषो मत्तस्ते मत्तमातङ्गगामिनी ॥२१॥
दारुणायां तु वेलायां यस्मात् त्वं समुपस्थिता। शृणु तस्मात् सुतान् भद्रे यादृशाञ्जनयिष्यसि ॥२२॥
दारुणान् दारुणाचारान् दारुणाभिजनप्रियान्। जनयिष्यसि सुश्रोणि राक्षसान् क्रूरकर्मणः ॥२३॥
सा तु तद्वचनं श्रुत्वा प्रणिपत्याब्रवीद्वचः। भगवन्नेदृशाः पुत्रास्त्वत्तो ब्राह्मणयोनितः ॥२४॥
स कन्ययैवमुक्तस्तु विश्रवा मुनिपुङ्गवः। उवाच नैकसीं भूयः पूर्णेन्दुरिव रोहिणीम् ॥२५॥
पश्चिमो यस्तव सुतो भविष्यति शुभानने। समधर्मानुरूपः स भविष्यति न संशयः ॥२६॥
एवमुक्ता तु सा कन्या श्याम कालेन केनचित्। जनयामास बीभत्सरक्षोरूपं सुदारुणम् ॥२७॥
दशग्रीवं महादंष्ट्रं नीलाञ्जनचयोपमम्। ताम्रोष्ठं विंशतिभुजं महास्यं दीप्तमूर्धजम् ॥२८॥
जातमात्रे ततस्तस्मिन् प्रजज्वाल बलाग्निना। क्रव्यादाश्चापशव्यानि मण्डलानि प्रचक्रमुः ॥२९॥
ववर्षू रुधिरं देवा मेघाश्च खरनिःस्वनाः। निष्प्रभश्चापि सूर्योऽपि महोल्का चापतद्भुवि ॥३०॥
चकम्पे धरणी चैव ववुर्वाताः सुदारुणाः। अक्षोभ्यः कुक्षिभिश्चैव समुद्रः सरितां पतिः ॥३१॥
अथ नामाकरोत् तस्य पितामहसमः पिता। दशग्रीवः प्रसूतोऽयं दशग्रीवो भविष्यति ॥३२॥
तस्य त्वनन्तरं जातः कुम्भकर्णो महाबलः। प्रमाणाद्यस्य विपुलं प्रमाणं नेह विद्यते ॥३३॥
ततः शूर्पणखा नाम सञ्जज्ञे विकटानना। विभीषणश्च धर्मात्मा नैकस्याः पञ्चमः सुतः ॥३४॥
तस्मिन् जाते महासत्त्वे पुष्पवर्षं पपात ह। आकाशस्था दुन्दुभयो देवानां प्राणदंस्तथा ॥३५॥
वाक्यं चैवान्तरिक्षे च साधु साध्विति वै तदा। तौ तु तत्र महारण्ये ववृधाते महौजसौ ॥३६॥
कुम्भकर्णदशग्रीवौ लोकोद्वेगकरौ तदा। कुम्भकर्णः प्रमत्तस्तु महर्षीन् धर्मवत्सलान् ॥३७॥
त्रैलोक्यं नित्यसन्तुष्टोभक्षयन् विचचार ह। विभीषणस्तु धर्मात्मा नित्यं धर्मे व्यवस्थितः ॥३८॥
स्वाध्यायी नियताहार उवास विजितेन्द्रियः। अथ वैश्रवणो देवस्तत्र कालेन केनचित् ॥३९॥
आयातः पितरं द्रष्टुं पुष्पकेण धनेश्वरः। तं दृष्ट्वा नैकसी तत्र ज्वलन्तमिव तेजसा ॥४०॥
आगम्य राक्षसी तत्र दशग्रीवमुवाच ह। सुतं वैश्रवणं पश्य भ्रातरं तेजसा वृतम् ॥४१॥
भ्रातृभावं समे वाऽपि पश्यात्मानं त्वमीदृशम्। दशग्रीव तथा यत्नं कुरुष्वामितविक्रमः ॥४२॥
यथा त्वमपि पुत्रो मे भव वैश्रवणोपमः। मातुस्तद्वचनं श्रुत्वा दशग्रीवः प्रतापवान् ॥४३॥
अमर्षमतुलं लेभे प्रतिज्ञां चाकरोत् तदा। सत्यं ते प्रतिजानामि भ्रातृतुल्योऽधिकोऽपि वा ॥४४॥
भविष्याम्योजसा चैव सन्तापं त्यज हृद्गतम्। ततः क्रोधेन तेनैव दशग्रीवः सहानुजः ॥४५॥
चिकीर्षुर्दुष्करं कर्म तपसे धृतमानसः। प्राप्स्यामि तपसा काममिति कृत्वा यथाविधि।
आगच्छदात्मसिद्ध्यर्थमत्र गोकर्णसन्निधौ ॥४६॥
सराक्षसश्चात्र सहानुजस्तदा तपश्चचारातुलमुग्रविक्रमः।
अतोषयच्चापि पितामहं विभुं ददौ स तुष्टश्च वरं महात्मने ॥४८॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये त्रयोविंशोऽध्यायः ॥२३॥

---

अगस्त्यले भने– कुनै बेला मेघ जस्तो र तातेको सुन जस्तो त्यो सुमाली राक्षस कमल विनाकी लक्ष्मी जस्ती राम्री छोरी लिएर पृथिवीमा घुमिरहेको थियो। कुबेर बाबु र आमाको दर्शन गर्न पुष्पकद्वारा गइरहेका थिए। सुमालीले उनलाई आकाशमा देख्यो। आगो जस्तो र आगैको उपमा दिन सकिने त्यस विमानलाई देखेर राक्षसले राक्षसहरूको हित चिताएर विचार गर्‍यो। के गरेर कल्याण होला ? कसरी हामी बढ्छौं? विवाह गर्नुपर्ने बेला भएकी राक्षसी छोरी नैकसीलाई विश्रवाको हातमा दिऊँ कि क्या ? ॥१–५॥

बाघजस्तो पराक्रम भएको त्यस राक्षसले नैकसी नामकी ती छोरीलाई भन्यो – छोरी तिमीलाई दिने बेला भयो, उमेर पनि चढिसक्यो। तिम्रै लागि हामी धर्मबुद्धि भएका सबै लागेका छौं। चाँडै नै तिमीभित्र छोरो पाउने इच्छा उठ्नेछ। हाम्रो कुलमा

तिमी नै कमल नभएकी लक्ष्मीजस्ती सबै गुणले युक्त छ्यौ। हे कल्याणी ! प्रत्याख्यान गर्नाले डराएका राक्षसहरूद्वारा वरण गरिनेछैनौ। छोरीका लागि राम्रो वर केयेको पत्तै छैन। मान चाहने सबै बाबुहरूका लागि छोरी दुःखकै कारण हो। आमाको कुल, बाबुको कुल र जहाँ छोरी दिइन्छ, त्यो कुल गरी तीनै कुलमा कन्याले शङ्का नै गराउँछे। त्यस्ती तिमी प्रजापतिको कुलमा उत्पन्न भएका श्रेष्ठ मुनि पौलस्त्य विश्रवाकहाँ जाऊ र हे छोरी ! आफै वरण गर। छोरी निश्चय नै तिम्रा यस्ता छोरा हुनेछन्, जस्ता सूर्यजस्तो तेजिला यी कुबेर छन्। ती कन्या त्यो कुरा सुनेर बाबुले भनेकोले जहाँ विश्रवा तपस्या गर्थे, त्यहीँ आश्रममा गएर बसिन् ॥६-१३½॥

हे श्याम ! यसै बीचमा पुलस्त्यका छोरा ब्राह्मण चौँथो अग्नि झैं अग्निहोत्रका लागि बसे। बाबुले भनेको हुनाले तिनी उनको दारुण काल पत्तै नपाएर उनको अगाडि गइन्। पाउमा निहुरेको मुण्टो गरेर बसिन्। पूर्ण चन्द्रमा जस्तो मुख भएकी तिनलाई देखेर ज्यादै उदार र तेजले गर्दा बलेका ती धर्मात्माले भने – हे कल्याणी ! कसकी छोरी हौ ? कहाँबाट तिमी यहाँ आयौ ? अथवा के काम र केको निम्ति आयौ ? हे कल्याणी ! नढाँटी भन ॥१४-१७॥

यति भनेपछि ती कन्याले हात जोडेर भनिन् – हे ब्राह्मण ! बाबुको आज्ञाले आएकी मलाई राक्षसी भनेर चिन्नुहोस्। मेरो नाम नैकसी हो। हे मुनि ! अरू सबै तपस्याको प्रभावबाट म जुनकार्यका निम्ति आएकी हुँ, जान्नुहोस्। त्यसपछि मुनिले ध्यानमा पुगेर यो कुरो भने – हे कल्याणी ! मैले तिम्रो मनमा भएको कारण थाहा पाएँ। हे मत्ताहात्तीको जस्तो हिँडाइ भएकी ! के मबाट छोरो पाउने इच्छा छ ? ॥१८-२१॥

दारुण बेलामा तिमी आएकी हुनाले हे कल्याणी ! जस्ता छोरा पाउनेछ्यौ, त्यो सुन। हे सुश्रोणी ! डरलाग्दो आचार भएका, डरलाग्दा र डरलाग्दा कर्म गर्ने परिवारका प्यारा, क्रूरकर्म भएका डरलाग्दा राक्षसहरूलाई तिमीले जन्माउनेछ्यौ। तिनले त त्यो कुरो सुनेर प्रणाम गरेर भनिन् – हे भगवन् ! तपाईंजस्ता ब्राह्मणको वीर्यबाट यस्ता छोरा नहुनुपर्ने ? ॥१९-२४॥

ती कन्याले यस्तो भनिएका श्रेष्ठ मुनि विश्रवाले रोहिणीलाई पूर्ण चन्द्रमाले झैं नैकसीलाई फेरि भने – हे राम्रो अनुहार भएकी जुन तिम्रो पछिल्लो छोरो हुनेछ, त्यो निश्चय नै मैजस्तो हुनेछ। हे श्याम ! यस्तो भनिएकी ती कन्याले केही समयपछि बीभत्स राक्षसको रूप भएको डर लाग्दा दशवटा टाउका र लामा दाह्रा भएको कालो गाजलको थुप्रो जस्तो ताँबोजस्तो ओठ भएको बीस हात भएको ठूलो मुख भएको र बलेकोजस्तो ठाडा रौं भएको बच्चा जन्माइन् ॥२५-२८॥

त्यो जन्मनासाथै राक्षसहरू पनि अपसव्य गरेर मण्डल पारी हिँड्न थाले, आगोहरू पनि त्यसै बल्न थाले। देवताहरूले रगत बर्साए, मेघहरू पनि गधाको जस्तो शब्द गर्ने भए, सूर्य पनि तेज नभएका भए र पृथ्वीमा ठूलो डल्ला खस्यो। पृथ्वी काँप्यो, भयङ्कर हावा चल्यो, नदीहरूका पति अक्षोभ्य समुद्र पनि कुना कुनामा काँपे। यसपछि त्यसका पितामहतुल्य बाबुले यो दशवटा गर्धन भएको जन्मिएकोले दशग्रीव हुनेछ भन्ने नाम राखे। त्यसपछि खूब बलिया कुम्भकर्ण जन्मियो जुनभन्दा ठूलो त यहाँ प्रमाणै छैन। त्यसपछि विकट अनुहार भएकी शूर्पणखा जन्मी। धर्मात्मा विभीषण त नैकसीका पछिल्ला छोरा हुन्। ती महासत्त्व असल प्राणी जन्मँदा फूलवर्षा भयो। आकाशमा रहेका देवताहरूका दुन्दुभिहरू बजे। आकाशमा साधु साधु भन्ने वाक्य निस्क्यो। लोकलाई पीडा गर्ने ठूलो तेज भएका ती दुई कुम्भकर्ण र दशग्रीव ठूलो जङ्गलमा बढे। मातेको कुम्भकर्णले त धर्मलाई प्यारो गर्ने महर्षिहरूलाई खाँदै सधैँ खुसीहुँदै तीनै लोक चहार्‍यो। धर्मात्मा विभीषण त सधैँ धर्ममा लागेका, स्वाध्यायी, नियत आहार भएका र इन्द्रिय जितेका भई बसे ॥२९-३८॥

अनि विश्रवाका छोरा कुवेर केही समयपछि पुष्पकद्वारा बाबुलाई हेर्न त्यही बाटो गरेर आए। तेजले बल्लान् जस्ता तिनलाई देखेर राक्षसीले त्यहाँ आएर आफ्ना छोरा दशग्रीवलाई भनिन्। तेजै तेज भएका विश्रवाका छोरा दाजुलाई हेर, भ्रातृभाव बराबर भए पनि यस्तो भएको आफूलाई हेर। दशग्रीव त्यस्तो प्रयास गर धेरै पराक्रम भएका मेरा छोरा ! जसरी हुन्छ, तिमी पनि कुबेर जस्तो होऊ। प्रतापी दशग्रीवले आमाको त्यो कुरा सुनेर खूब जोशमा आएर प्रतिज्ञा गर्‍यो – साँच्चै तपाईंलाई भन्छु, दाजुबराबर अथवा बढी पनि तेजद्वारा हुनेछु, मनको पीर छोड्नुहोस्। त्यसपछि त्यसै रीसले भाइसँगै भएको र तपस्यामा मन दिएको दशग्रीवले गर्न कठिन पर्ने कर्म गर्‍यो। विधिपूर्वकको तपस्याले चिताएको कुरा पाउनेछु भन्ने सोचेर आफ्नो कुरा पुर्‍याउनका लागि यहाँ गोकर्णको नजिकमा आयो। भाइ सँगै भएको, खूब भयङ्कर पराक्रम भएको त्यस राक्षसले तपस्या गर्‍यो र ब्रह्माजीलाई खुसी पनि बनायो। खुसी भएका ब्रह्माजीले महात्मालाई वर दिनुभयो ॥३९-४८॥

स्कन्दपुराण अन्तर्गत हिमवत्खण्डमा नेपालमाहात्म्यको तेइसौं अध्याय पूर्ण भयो।

# अथ चतुर्विंशोऽध्यायः

## रावणकृता कठोरतपस्या (रावणले गरेको कठोर तपस्या)

मार्कण्डेय उवाच

अथाब्रवीन्मुनिः श्याम अत्रागत्य महाबलाः । आचक्ष्व कीदृशं ब्रह्मन् तपस्तेपुर्महौजसः ॥१॥
अगस्त्यस्त्वब्रवीत् श्यामं भूयः प्रयतमानसम् । तांस्तान् धर्मविधींस्तात भ्रातरस्ते समाश्रिताः ॥२॥
कुम्भकर्णस्तदात्यर्थं सत्यधर्मपरायणः । अतपद्ग्रीष्मकाले वै सोऽग्निभिः सूर्यपञ्चमैः ॥३॥
मेघाम्बुसिक्तो वर्षासु वीरासनमसेवत । नित्यं च शिशिरे काले जलमध्ये प्रतिश्रयः ॥४॥
एवं वर्षसहस्राणि दश तस्य तदा ययुः । सत्यधर्मानुरक्तस्य सत्येष्वधिष्ठितस्य च ॥५॥
विभीषणश्च धर्मात्मा नित्यं धर्मरतः शुचिः । पञ्च वर्षसहस्राणि पादेनैकेन तस्थिवान् ॥६॥
समाप्ते नियमे तस्य ननृतुश्चाप्सरोगणाः । पपात पुष्पवर्षं च तुष्टुवुश्चैव देवताः ॥७॥
पञ्च वर्षसहस्राणि सूर्यमेवानुवर्तयत् । तस्थावूर्ध्वशिरोबाहुः स्वाध्यायासक्तचेतनः ॥८॥
एवं विभीषणस्यापि गतानि सुमहात्मनः । दश वर्षसहस्राणि स्वर्गस्थस्यैव नन्दने ॥९॥
पुनश्च शङ्खमूलस्य सङ्गमे जलमाश्रितः । तपश्चचार सुमहन्निराहारो जितेन्द्रियः ॥१०॥
लिङ्गानां कोटिमुत्पाद्य व्रतं कृत्वा महत्तरम् । वाग्वत्या मणिमत्याश्च सङ्गमे पूर्वगे तटे ॥११॥
लिङ्गं संस्थाप्य कोटीनां लिङ्गानामुपरिस्थले । दिव्यवर्षसहस्रं तु निराहारो दशाननः ॥१२॥
पूर्णे वर्षसहस्रे तु शीर्षमग्नौ जुहाव सः । एवं वर्षसहस्राणि नव तस्यातिचक्रमुः ॥१३॥
शिरांसि नव चाप्यस्य प्रविष्टानि हुताशनम् । पूर्णे वर्षसहस्रे तु दशमे दशमं शिरः ॥१४॥
छेत्तुकामस्य धर्मात्मा प्राप्तस्तस्य प्रजापतिः । पितामहस्तु सुप्रीतः सह देवैरुपस्थितः ॥१५॥
वत्स वत्स दशग्रीव प्रीतस्तेऽस्मीत्यभाषत । शीघ्रं वृणीष्व भद्रं ते वरं यत् तेऽभिवाञ्छितम् ॥१६॥
तत् ते कामं करोम्यद्य न वृथा ते परिश्रमः । ततोऽब्रवीद्दशग्रीवः प्रहृष्टेनान्तरात्मना ॥१७॥
प्रणम्य शिरसा देवं हर्षगद्गदया गिरा । भगवन् प्राणिनां नित्यं नान्यत्र मरणाद्भयम् ॥१८॥
न च मृत्युसमः शत्रुरमरत्वं ततो वृणे । एवमुक्तस्ततो ब्रह्मा दशग्रीवमुवाच ह ॥१९॥
नास्ति सर्वामरत्वं ते वरमन्यं वृणीष्व वै । एवमुक्तस्तदा श्याम ब्रह्मणा लोककारिणा ॥२०॥
दशग्रीव उवाचेदं कृताञ्जलिरथाग्रतः । सुपर्णनागयक्षाणां दैत्यदानवरक्षसाम् ॥२१॥
अवध्यत्वं प्रजाध्यक्ष देवतानां च सर्वशः । न हि चिन्ता ममान्येषु प्राणिषु प्रपितामह ॥२२॥
तृणभूता हि मे सर्वे प्राणिनो मानुषादयः । एवमुक्तस्तु धर्मात्मा दशग्रीवेण रक्षसा ॥२३॥
उवाच वचनं श्याम सह देवैः पितामहः । भविष्यति तदेवं वै तव राक्षसपुङ्गव ॥२४॥
शृणु चापि वरं भूयः प्रीतस्य विहितं मम । हुतानि यानि शीर्षाणि पूर्वमग्नौ त्वयाऽनघ ॥२५॥
उत्थास्यन्ति पुनस्तानि तव राक्षसपुङ्गव । वितरामि वरं सौम्य तव चान्यं सुदुर्लभम् ॥२६॥
छन्दतो विन्द भद्रं ते रूपमन्यद्यदीच्छसि । एवं पितामहोक्तस्य दशग्रीवस्य रक्षसः ॥२७॥
अग्नौ हुतानि शीर्षाणि यानि तान्युत्थितानि वै । एवमुक्त्वा तु तं श्याम दशग्रीवं प्रजापतिः ॥२८॥
विभीषणमथोवाच वाक्यं लोकपितामहः । विभीषण त्वया वत्स धर्मसंहितबुद्धिना ॥२९॥
आराधितोऽस्मि धर्मज्ञ वरं वरय सुव्रत । विभीषणस्तु धर्मात्मा प्राञ्जलिर्वाक्यमब्रवीत् ॥३०॥
ततः सर्वगुणैर्नित्यं चन्द्रमा रश्मिभिर्यथा । भगवन् हितमेतावन्मन्ये लोकेश्वरः प्रभुः ॥३१॥
प्रीतो यदि तु दातव्यो वरो मे शृणु सुव्रत । परमापद्गतस्यापि धर्मे एव मतिर्भवेत् ॥३२॥
अशिक्षितं च भगवन् ब्रह्मास्त्रं प्रतिभातु मे । या या जायेत मे बुद्धिस्तेषु तेष्वाश्रमेष्विह ॥३३॥
सा सा भवतु धर्मिष्ठा तं तं धर्मं भजे तव । एष मे परमोदारो वरः परमको मतः ॥३४॥
न हि धर्मानुरक्तानां किं चिल्लोकेऽस्ति दुर्लभम् । अथ प्रजापतिः प्रीतो वाक्यमेतदुवाच ह ॥३५॥
धर्मिष्ठस्त्वं यथा वत्स तथैतत् ते भविष्यति । यस्माद्राक्षसयोनौ ते जातस्यामित्रकर्षण ॥३६॥
नाधर्मे जायते बुद्धिरमरत्वं ददामि ते । एष एव च ते कामो नित्यं वत्स भविष्यति ॥३७॥

अशिक्षितं च ब्रह्मास्त्रं यथावत् प्रतिपत्स्यते। कुम्भकर्णाय तु वरं दातुकामं तपोधन ॥३८॥
प्रजापतिं सुराः सर्वे वाक्यं प्राञ्जलयोऽब्रुवन्। न तावत् कुम्भकर्णाय प्रदातव्यो वरस्त्वया ॥३९॥
जानासि हि यथा लोकाँस्त्रासयत्येष राक्षसः। नन्दनेऽप्सरसः सप्त महेन्द्रानुचरा दश ॥४०॥
अनेन भक्षिता ब्रह्मन् ऋषयो ब्राह्मणास्तथा। तच्छापो वरणादस्मै दीयताममितप्रभो ॥४१॥
लोके वै स्वस्ति चैवं स्यादभवेदस्या च सम्मते। एवमुक्तः सुरैर्ब्रह्माऽचिन्तयत् पद्मसम्भवः ॥४२॥
देवीं सरस्वतीं देवः पद्माक्षीं पद्मसम्भवीम्। विलोक्य सर्वभूतेषु जिह्वा बुद्धिर्धृतिः स्मृतिः ॥४३॥
चिन्तिता चोपतस्थौ सा पार्श्वे हृष्टा सरस्वती। प्राञ्जलिः प्राह पार्श्वस्था सा तु देवी सरस्वती ॥४४॥
वाणि त्वं राक्षसस्यास्ये भव या देवतेप्सिता। इत्युक्त्वा सा प्रणम्याथ तं विवेश निशाचरम् ॥४६॥
ततो भार्गव तद्रक्षो ब्रह्मा वचनमब्रवीत्। कुम्भकर्ण महाबाहो वरं वरय राक्षस ॥४७॥
कुम्भकर्णस्ततो हृष्टः श्रुत्वा वाक्यमुवाच ह। स्वप्तुं वर्षसहस्राणि देवदेव ममेप्सितम् ॥४८॥
षण्मासान्ते भवेद् देव दिनमेकं तु भोजनम्। एवमस्त्विति तं चोक्त्वा सह देवैः पितामहः ॥४९॥
देवी सरस्वती चैव मुक्त्वा तं प्रययौ दिवम्। गतेषु ब्रह्मपूर्वेषु दैवतेषु नभःस्थलम् ॥५०॥
विमुक्तोऽसौ सरस्वत्या पूर्वां प्रकृतिमागतः। कुम्भकर्णस्तु दुष्टात्मा चिन्तयामास दुःखितः ॥५१॥
ईदृशं किमिदं वाक्यं वदनान्मम निःसृतम्। अनभिप्रेतपूर्वं हि सम्मोहादिव भाषितम् ॥५२॥
भक्षयामीति वदता स्वप्स्यामीत्युदितं मया। सन्तप्यमानो दुःखार्तो विधुन्वँश्चरणौ करौ ॥५३॥
आत्मानमेवमवशं श्वसन् निन्दन् पपात ह। एवं लब्धवराः सर्वे भ्रातरो दीप्ततेजसः।
श्लेष्मान्तकवनं नाम तत्र ते न्यवसँश्चिरम् ॥५४॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये चतुर्विंशोऽध्यायः ॥२४॥

---

मार्कण्डेयले भन्नुभयो – खूब बलिया र ठूलो तेज भएका राक्षसहरूले यहाँ आएर कस्तो तपस्या गरे ? हे ब्राह्मण ! भन्नुहोस् ॥१॥

पवित्र मन भएका श्यामलाई फेरि अगस्त्यले भने – हे बाबु ! ती धर्मविधि लिएका तीन भाइहरू थिए। त्यस बेला खूब धर्ममा लागेको कुम्भकर्णले ग्रीष्मकालमा सूर्य समेत गरेर पाँच पञ्चाग्निमा रही तपस्या गऱ्यो। वर्षामा मेघको पानीले सेचिएर र शिशिरमा सधैँ पानीको बीचमा बसेर वीरासनमा तपस्या गऱ्यो ॥४॥ यसरी सत्यधर्ममा र सत्यमा अटल रहँदा त्यसका दश हजार वर्ष बिते ॥२–५॥

सधैँ धर्ममा लागेका, पवित्र र धर्मात्मा विभीषण पनि एक पाउले पाँच हजार वर्ष अडिएर रहे। तिनको नियमसमाप्ति हुँदा अप्सराहरू नाचे, फूलवर्षा भयो र देवताहरू पनि खुसी भए। उनले पाँच हजार वर्ष सूर्यको मात्रै ध्यान गरे। उँभो मुख र माथि हात गरेर र स्वाध्यायमा चित्त लगाएर रहे। स्वर्गमा नै रहेका महात्मा विभीषणले पनि नन्दनमा त्यसरी नै दश हजार वर्ष बिताए। फेरि आएर शङ्खमूलको सङ्गममा पानीमा बसेर निराहार रहेर इन्द्रिय जिती ठूलो तपस्या गरे ॥६–१०॥

वाग्वती र मणिमतीको सङ्गमको पूर्वी किनारामा ठूलो व्रत गरेर कोटि लिङ्ग उत्पन्न गराई लिङ्गस्थापना गरेर कोटियौं लिङ्गको माथिपट्टि दिव्य हजार वर्षसम्म निराहार बसेको दशाननले एक एक हजार वर्ष बितेपछि आगोमा टाउकाको होम गऱ्यो। यसरी नै त्यसका नौ हजार वर्ष बिते। यसका नौ औटा शिरहरू आगोमा परे। दश हजार वर्ष पुगेपछि दसौँ शिर काट्न खोज्ने त्यसको अगाडि देवताहरूलाई लिएरखुसी भएका प्रजाहरूका पति पितामह उपस्थित हुनुभयो र भन्नुभयो – बाबु ! बाबु ! दशग्रीव तिमीदेखि खुसी छु। चाँडो तिमीलाई इच्छा लागेको असल वर माग। तिम्रो इच्छा अनुसारको काम आज गर्छु। तिम्रो परिश्रम खेर जाँदैन ॥११–१६½॥

त्यसपछि दशग्रीवले देवलाई शिरले प्रणाम गरी हर्षले गद्गद भएको बोलीले दिलैदेखि खुसी भएर भन्यो – हे भगवान् ! प्राणीहरूलाई सधैँ मर्ने डर हुन्छ। अरू थोकको हुँदैन। मृत्युबराबर शत्रु कोही छैन। यसैले मलाई मर्दै नमर्ने वर दिनुहोस्। त्यसपछि ब्रह्माजीले दशग्रीवलाई भन्नुभयो – सबै अमर हुँदैनन्, अर्को वर माग ॥१७–१९½॥

हे श्याम ! लोकनिर्माता ब्रह्माजीले यस्तो भनिएको दशग्रीवले सामुमा हात जोडेर यस्तो भन्यो – हे प्रजाका अध्यक्ष ! गरुड, नाग, यक्ष, दैत्य, राक्षस र सबै देवताहरूबाट नमारिने होऊँ। हे प्रपितामह ! अरू प्राणीहरूमा मेरो चिन्ता नै छैन। मानिस आदि सबै प्राणीहरू तृण बराबर नै हुन्। हे श्याम ! राक्षस दशग्रीवले यस्तो भनिएका धर्मात्मा र देवताहरूका साथ रहनुभएका

पितामहले भन्नुभयो– तिमीले चिताए झैं हुनेछ। हे श्रेष्ठ राक्षस !खुसी भएको मबाट निश्चित वर पनि फेरि सुन। हे धर्मात्मा ! पीरै नमानी जति टाउकाहरू पहिल्यै आगोमा होम्यौ। हे श्रेष्ठ राक्षस ! फेरि तिम्रा ती टाउकाहरू खडा हुनेछन्। तिमीलाई अर्को पाइ नसक्नु वर दिन्छु। तिमी अर्को जुन रूपको इच्छा गर्छौ, त्यो रोजे अनुसारको रूप पाउने छौ ॥२०–२६½॥

ब्रह्माजीले यसरी भनेपछि दशग्रीव राक्षसका जति आगोमा होमिएका टाउका हुन्, ती सबै उठे। हे श्याम ! दशग्रीवलाई यस्तो भनेर लोकका पितामह ब्रह्माजीले विभीषणलाई भन्नुभयो – बाबु विभीषण ! धर्म बुद्धि भएका तिमीले आराधना गरिएको छु। हे असल व्रत लिने र धर्म जान्ने विभीषण ! वर माग। रश्मिहरूले चन्द्रमालाई झैं सबै गुणहरूले सधैं घेरा लाइएका धर्मात्मा विभीषणले हात जोडेर भने – भगवान् !मैले जुन धेरै कुरा पाएको छु, त्यसबाट मेरो हित नै भएको छ। हे लोकका प्रभु ! यदि खुसी हुनुहुन्छ भने हे सुव्रत ! मलाई दिनुपर्ने वर सुन्नुहोस् – ठूलो आपतमा परे पनि मेरो बुद्धि धर्ममा नै लागोस्। हे भगवान् ! नसिकेको ब्रह्मास्त्र पनि मलाई फुरोस्। ती ती आश्रमहरूमा मेरो जुन जुन बुद्धि उत्पन्न होला, त्यो बुद्धि धार्मिक होओस् र तपाईंको त्यस्तै धर्ममा लागूँ। परम उदार यो वर मेरा लागि ज्यादै ठूलो हो। धर्ममा लागेकाहरूका लागि संसारमा पाइनसक्नु केही छैन ॥२७–३४½॥

यसपछि खुसी भएका प्रजापतिले यो कुरो भन्नुभयो – हे बाबु ! तिमी धर्मिष्ठ छौ। तिमी सधैं यस्तै धर्मात्मा होऊ। राक्षसको योनिमा जन्मेका र शत्रुलाई नाश गर्ने तिम्रो अधर्ममा बुद्धि जानेछैन र तिमीलाई देवत्व दिन्छु। हे बाबु ! यही नै तिम्रो इच्छा छ, यो सधैं हुनेछ। नसिकिएको ब्रह्मास्त्र पनि जस्ताको तस्तै पाउनेछौ ॥३५–३७½॥

हे तपोधन ! कुम्भकर्णलाई वर दिन खोज्ने प्रजापतिलाई त हात जोडेका सबै देवताहरूले भने – भो कुम्भकर्णलाई तपाईं वर नदिनुहोस्, कसरी त्यस राक्षसले लोकहरूलाई तोवा पार्छ, त्यो कुरा हजुरलाई थाहा नै छ।। हे ब्रह्मा ! नन्दनमा सातवटा अप्सरा दशवटा इन्द्रका अनुचर एवं ऋषि र ब्राह्मणहरू पनि यसले खायो। हे समर्थ ब्रह्माजी ! त्यो वर सराप झैं यसलाई दिनुहोस्। जुन वरमा लोकको कल्याण र उसको मञ्जूरी पनि भएको होस् ॥३८–४१½॥

देवताहरूले यसरी प्रार्थना गरिएका, कमलबाट उत्पन्न भएका देव ब्रह्माजीले कमलको जस्तो आँखा भएकी र कमलै बाट उत्पन्न भएकी देवी सरस्वतीलाई सम्झनुभयो। सम्पूर्ण प्राणीको जिब्रो, बुद्धि, धृति, स्मृतिमा उनलाई देखेर तिनको ध्यान गर्नुभयो !खुसी भएकी उनै सरस्वती बगलमा उपस्थित भइन्। नजिकै रहेकी ती देवी सरस्वतीले हात जोडेर भनिन् – देव ! यहीं आएकी छु। तपाईंको के काम गरूँ ? ॥४२–४४॥

प्रजापतिले उनै देवी सरस्वतीलाई भन्नुभयो – हे सरस्वती ! देवताहरूले चाहे जस्तो बनी यस राक्षसको मुखमा बस। यति सुनेर तिनले प्रणाम गरिन् र त्यस राक्षसमा प्रवेश गरिन्। हे भार्गव ! त्यसपछि त्यस राक्षसलाई ब्रह्माजीले भन्नुभयो – हे महाबाहु ! हे कुम्भकर्ण ! राक्षस वर माग। यस्तो वचन सुनेपछि खुसी भएको कुम्भकर्णले भन्यो – हे देवताका पनि देव ! म त हजारौं वर्ष सुत्न चाहन्छु छ महिनापछि एक दिन मेरो भोजनका लागि तोकियोस्। त्यसलाई यस्तै होओस् भनेर देवताहरूका साथ ब्रह्माजी स्वर्ग जानुभयो र देवी सरस्वती पनि त्यसलाई छोडेर स्वर्ग गइन्। ब्रह्मादि देवताहरू आकाशमा गएपछि सरस्वतीले छोडिएको त्यो कुम्भकर्ण पहिल्यैको स्थितिमा पुग्यो ॥४५–४९½॥

अनि पिरिएको दुष्टात्मा कुम्भकर्णले सोच्यो – हाय ! के यस्तो वाक्य मेरो मुखबाट निस्कियो नि, पहिल्यै कहिल्यै नचाहेको कुरा मैले बेहोशमा बोलें, खान्छु भन्नु पर्नेमा मैले सुत्छु यस्तो पो भनें। ताप मानेको, दुःखले पिरिएको, हात र खुट्टा हल्लाउँदो र आफ्नै काबूमा नभएको त्यो स्वाँ फ्वाँ गर्दै गाली गर्दै भुईंमा पछारियो। यसरी वर पाएका र बल्दा तेज भएका ती सबै भाइहरू त्यहीं श्लेष्मान्तक वनमा धेरै समयसम्म बसे ॥५०–५४॥

स्कन्दपुराण अन्तर्गत हिमवत्खण्डमा नेपाल माहात्म्यको चौबीसौं अध्याय सकियो।

## अथ पञ्चविंशोऽध्यायः

रावणस्य लङ्कावासेच्छा कुबेरकृतो लङ्कात्यागश्च

(रावणको लङ्कामा बस्ने इच्छा र कुबेरद्वारा लङ्कापरित्याग)

अगस्त्य उवाच

सुमाली वरलब्धाँस्तु ज्ञात्वा तान् वै निशाचरः। उदतिष्ठद्भयं त्यक्त्वा सानुगः सर्व आतुरः ॥१॥
माली चण्डः प्रहस्तश्च विरूपाक्षो महोदरः। सचिवाः परिवार्यैनमुपातिष्ठन् सुमालिनम् ॥२॥
प्रस्थितः सचिवैः सर्वैर्वृतो राक्षसपुङ्गवैः। अभिगम्य दशग्रीवं परिष्वज्येदमब्रवीत् ॥३॥

दिष्ट्या ते पुत्र सम्प्राप्तश्चिन्तितोऽयं मनोरथः। यस्त्वं त्रिभुवनश्रेष्ठाल्लब्धवान् वरमीदृशम् ॥४॥
यत्कृते च वयं लङ्कां त्यक्त्वा याता रसातलम्। तद्गतं नो महाबाहो महद्विष्णुकृतं भयम् ॥५॥
असकृत् तेन भग्ना हि परित्यज्य स्वमालयम्। विद्रुताः सहिताः सर्वे प्रविष्टाः स्मो रसातलम् ॥६॥
अस्मदीया च लङ्केयं नगरी राक्षसोषिता। निवेशिता तव भ्रात्रा धनाध्यक्षेण धीमता ॥७॥
यदि नाम न शक्येयं समावस्तुं त्वयाऽनघ। तपसा वा महाबाहो प्रत्यानेतुं त्वमर्हसि ॥८॥
त्वं तु लङ्केश्वरस्तात भविष्यसि न संशयः। सर्वेषा नः प्रभुश्चैव भविष्यसि महाबल ॥९॥

दशग्रीव उवाच

अथाऽब्रवीद्दशग्रीवो मातामहमुपस्थितम्। वित्तेशो गुरुरस्माकं नार्हस्येवं प्रभाषितुम् ॥१०॥
इत्येवमुक्तः स तदा सुमाली रावणेन हि। नोवाच किञ्चिदत्रैव न्यवसत् स सुहृद्वृतः ॥११॥
कस्यचित् त्वथ कालस्य वसन्तं तत्र रावणम्। प्रहस्तः प्रश्रितं वाक्यमिदं राक्षसमब्रवीत् ॥१२॥

प्रहस्त उवाच

दशग्रीव महाबाहो यत् पुरा प्रोक्तवानसि। वित्तेशो गुरुरस्माकं वाक्यमेतन्निबोध मे ॥१३॥
महावीर महाबाहो नार्हस्त्वं वक्तुमीदृशम्। सौभ्रात्रं नास्ति वीराणां शृणु भूयो वचश्च मे ॥१४॥
अदितिश्च दितिश्चैव द्वे एते सहिते किल। भार्ये परमरूपिण्यौ कश्यपस्य प्रजापतेः ॥१५॥
अदित्यां जज्ञिरे देवास्तदा त्रिभुवनेश्वर। दितिश्चाजनयद्दैत्यान् कश्यपादात्मसम्भवान् ॥१६॥
दैत्यानां किल धर्मज्ञ पूरियं सवनार्णवा। आसीत् सर्वैर्वृता भूमिस्तेऽभवन् प्रभविष्णवः ॥१७॥
ततस्ते निहताः सर्वे विष्णुना प्रभविष्णुना। देवानां तु वशं नीतं त्रैलोक्यमिदमव्ययम् ॥१८॥
तथा वैरमपर्याप्तं गरुडस्योरगैः सह। भ्रातृभिः सम्प्रयुक्तं वै संहारो यस्य नाभवत् ॥१९॥
नैतदेको भवानद्य करिष्यति विपर्ययम्। सुरैराचरितं पूर्वं कुरुष्वैतद्वचो मम ॥२०॥ एवमुक्तो दशग्रीवः प्रहस्तेन महात्मना।
चिन्तयित्वा मुहूर्तं तु बाढमित्येव सोऽब्रवीत् ॥२१॥
स तु तेनैव हर्षेण तस्मिन्नहनि वीर्यवान्। लङ्कां गतो दशग्रीवः सह तैः क्षणदाचरैः ॥२२॥
त्रिकूटस्थः स तु तदा दशग्रीवो महाबलः। प्रेषयामास दौत्येन प्रहस्तं वाक्यकोविदम् ॥२३॥
प्रहस्त शीघ्रं तं गत्वा ब्रूहि राक्षसपुङ्गव। वचनान्मम वित्तेशं सामपूर्वमिदं वचः ॥२४॥
इयं लङ्कापुरी राजन् राक्षसानां महात्मनाम्। निवासो देवविहितः सर्वलोकपरिश्रुतः ॥२५॥
किञ्चित् कारणमुद्दिश्य त्यक्ताऽसीद्राक्षसैरियम्। ते पुनः समये प्राप्ते स्वं निवासमुपागताः ॥२६॥
त्वया निवेशिता चेयं तत् ते न सदृशं कृतम्। तद्भवान् यदि नामैतां दद्यादतुलविक्रमे ॥२७॥
कृता मम भवेत् प्रीतिर्धर्मश्चैवानुपालितः। इत्युक्तः स तदा गत्वा प्रहस्तो वाक्यकोविदः ॥२८॥
दशग्रीववचः सर्वं वित्तेशाय न्यवेदयत्। प्रहस्तादभिसंश्रुत्य सर्वं वैश्रवणो वचः ॥२९॥

वैश्रवण उवाच

उवाच वाक्यं वाक्यज्ञः प्रहस्तं स निशाचरम्। सर्वं कर्ताऽस्मि भद्रं ते राक्षसेशवचोऽचिरात् ॥३०॥
किन्तु तावत् प्रतीक्षस्व पितुर्यावन्निवेदये। एवमुक्त्वा धनाध्यक्षो जगाम पितुरन्तिकम् ॥३१॥
अभिवाद्याब्रवीत् तं च रावणस्य यदीप्सितम्। एष तात दशग्रीवो दूतं प्रेषितवान्मम ॥३२॥
ममेयं दीयतां लङ्का पूर्वं रक्षोगणोषिता। तन्मया यदनुष्ठेयं तदाचक्ष्व ममानघ ॥३३॥
धनदेनैवमुक्तस्तु विश्रवा मुनिपुङ्गवः। सोऽब्रवीद्वचनं तत्र शृणु पुत्र वचो मम ॥३४॥

विश्रवा उवाच

दशग्रीवो ममाप्येतदुक्तवान् मुनिसन्निधौ। मया निर्भर्त्सितः सोऽपि बहुधोक्तः सुदुर्मतिः ॥३५॥
क्रोधेन च पुनश्चोक्तो ध्वंस ध्वंसेति वै मुहुः। तच्छृणुष्व वचः पुत्र मम धर्मार्थसंहितम् ॥३६॥
वरप्रदानात् सम्मूढो धर्माधर्मं न वेद सः। न बिभेति च मे शापात् प्रकृतिं दारुणां गतः ॥३७॥
तस्मात् प्रयाहि भद्रं ते कैलासं धरणीधरम्। निशामय निकेतार्थं त्यज लङ्कां सहानुगः ॥३८॥
तत्र मन्दाकिनी नाम नदीनां प्रवरा नदी। काञ्चनैः सूर्यसङ्काशैः पङ्कजैर्मण्डितोदका ॥३९॥

तत्र देवाः सगन्धर्वाः साप्सरोगणकिन्नराः। विहारशीलाः सततं रमन्ते धरणीधरे ॥४०॥
रमस्व पुत्र त्वमपि रम्ये तस्मिन् शिलोच्चये। न हि क्षेमं तवानेन वैरं धनद रक्षसा ॥४१॥
जानीषे च यथा तेन लब्धः परमको वरः। तथेत्युक्त्वा स पितरमभिवाद्य कृताञ्जलिः ॥४२॥
ययौ लङ्कां पुनस्तूर्णं प्रहस्तं चेदमब्रवीत्। ब्रूहि गच्छ दशग्रीवं पुरीं राज्यं च यन्मम ॥४३॥
तवाप्येतन्महाभाग भुङ्क्ष्वैनं गतकण्टकम्। अविभक्तं त्वया सार्धं राज्यं यच्चास्ति मे वसु ॥४४॥
अहं गच्छामि कैलासं निवासाय सहानुगः। लङ्कामावस भद्रं ते स्वधर्ममनुपालय ॥४५॥
एवमुक्त्वा धनाध्यक्षो बलेन महता तदा। सपौरदारः सामात्यः सवाहनधनागतः ॥४६॥
प्रहस्तोऽथ दशग्रीवं गत्वा वचनमब्रवीत्। प्रहृष्टात्मा महात्मानं सहामात्यं सहानुगम् ॥४७॥
शून्या सा नगरी लङ्का त्यक्त्वैनां धनदो गतः। प्रविश त्वं महाबाहो स्वधर्ममनुपालय ॥४८॥
एवमुक्तः प्रहस्तेन दशग्रीवो निशाचरः। निवेशयामास पुरीं सभ्राता सपदानुगः ॥४९॥
धनदेन परित्यक्तां संविमुक्तमहापथाम्। स चाभिषिक्तः क्षणदाचरैस्तदा निवेशयामास पुरीं दशाननः।
निकामपूर्णा च बभूव सा पुरी निशाचरैर्नीलवलाहकोपमैः ॥५०॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये पञ्चविंशोऽध्यायः ॥२५॥

---

अगस्त्यले भने – सुमाली राक्षस तिनीहरूले वर पाई डर छोडेर अनुचरहरूका साथ हडबडाएर उठ्यो। माली, चण्ड, प्रहस्त, विरूपाक्ष, महोदर आदि सचिवहरू सुमालीलाई घेरेर रहेका थिए। श्रेष्ठ राक्षसवंशका सबै सचिवहरूले घेरिएर हिँडेको सुमालीले दशग्रीव कहाँ गई आलिङ्गन गरेर यो भन्यो। हे बाबु ! जुन तिमीले तीनै लोकका श्रेष्ठ पुरुषबाट यस्तो वर पाएको छौ, तिम्रो भाग्यले यो सोचेकै कुरो पाइएको छ। जसले गर्दा हामी लङ्का छोडेर पाताल गयौँ। विष्णुले उत्पन्न गरेको हाम्रो त्यो डर गयो। बारम्बार त्यसले छिन्न भिन्न पारिएका हामीहरूसबै मिलेर आफ्नो घर छोडी भागेर पातालमा पसेका हौँ। राक्षसहरू बसेको यो लङ्का नगरी हाम्रो हो। तिम्रा दाजु बुद्धिमान् कुबेरले यो शहर बसाएको हो। हे बाबु ! यदि यो लङ्का बस्न नसकिने छ भने हे महाबाहु ! तपस्याद्वारा तिमीले यो फिर्ता लिनैपर्छ। हे बाबु ! तिमी त लङ्काको मालिक निश्चय भइहाल्नेछौ, हे ठूलो बल भएका रावण ! हामी सबैको मालिक पनि हुनेछौ। अनि अगाडि बसेका मातामहलाई दशग्रीवले फेरि सम्बोधन गर्‍यो ॥१–९½॥

रावणले भन्यो– कुबेर हाम्रा मान्य हुन् भनेर नभन्नुहोस्। रावणले यस्तो भनेपछि सुमालीले त्यस बेला केही पनि भनेनन्, त्यहीँ नै मित्रहरूका साथ पसे। केही समयपछि त्यहीँ बस्ने राक्षस रावणलाई प्रहस्तले यस्तो नम्र कुरो भने ॥१०–१२॥

प्रहस्तले भन्यो – हे महाबाहु रावण ! पहिल्यै कुबेर हाम्रा गुरु हुन् भन्ने जुन कुरो भन्नुभएको थियो, त्यसमा मेरो यो कुरा सुन्नुहोस्। हे महाबाहु ! तपाईंले यस्तो भन्नुहुँदैन, वीरहरूको सौभ्रात्र भन्ने कुरो हुँदैन अझै मेरो कुरो सुन्नुहोस्। प्रजापति कश्यपका अदिति र दिति यी दुई खूब राम्रा पत्नी थिए। हे त्रिभुवनेश्वर ! कश्यपले अदितिमा देवताहरू र दितिमा दैत्य छोराहरू जन्माए। हे धर्मज्ञ ! वन र समुद्रले युक्त यो शहर दैत्यहरूको हो। यसको भूमि सबै ढाकिएको थियो,दैत्यहरू समर्थ थिए। पछि ती सबै समर्थ दैत्य विष्णुद्वारा मारिए। अविनाशी तीनै लोक स्वर्ग, मर्त्य र पाताल देवताहरूको वशमा लगिए। त्यस्तै सर्पहरूका साथ गरुडको प्रशस्त वैरभाव भयो। दाजुभाइमा परेको झगडा कहिल्यै टुङ्गिएन। आज तपाईं एउटाले उल्ट्ये काम गर्न हुनेछैन। पहिल्यै देवताहरूले उल्ट्ये काम गरियो ॥१३–२०॥

महात्मा प्रहस्तले यस्तो भनिएका रावणले केही क्षण विचार गरेर हुन्छ नै भन्यो। त्यसै खुसीले त्यसै दिनमा त्यो पराक्रमी रावण उनै राक्षसहरूका साथ लङ्कामा गयो। त्रिकूटमा रहेका बलियो रावणले बोल्न चतुर प्रहस्तलाई दूतका रूपमा पठायो। हे श्रेष्ठ राक्षस प्रहस्त ! तुरुन्त तपाईं गएर कुवेरलाई मैले भनेको भनी नम्रतापूर्वक यो कुरा भन्नुहोस्। हे राजा ! यो लङ्का शहर महात्मा राक्षसहरू बस्ने ठाउँ हो। देवताले बनाइएको हो र सबै दुनियाँले सुनेको हो। केही कारणले गर्दा यो राक्षसहरूले छोड्नुभएको थियो, फेरि मौका पाएर ती आफ्नो बस्ने ठाउँमा आएका छन्। यस लङ्कामा तपाईं बस्नुभयो। त्यसैले आफूले गर्नुपर्ने जस्तो व्यवहार गर्नुभएन तपाईं यो प्रशस्त पराक्रम भएका राक्षसहरूलाई दिनुहोस्। यसो गर्नुभयो भने मलाई प्रीति हुनेछ र धर्मको पनि पालन हुनेछ। यति भनिएका बोल्नमा बाठा उनै प्रहस्त गएर रावणका सबै कुरा कुवेरलाई निवेदन गरे। प्रहस्तबाट सबै कुरा सुनेर बोल्नमा बाठा ती कुवेरले प्रहस्त राक्षसलाई भने ॥२१–२९½॥

कुवेरले भने – तपाईंका राक्षसराज रावणको सबै भद्र कुरा चाँडै नै गरौंला, तर पिताजीलाई निवेदन गरुञ्जेल पर्खनुहोस्। धनका अध्यक्ष कुबेर यति भनेर पिताका नजिकमा गए। अभिवादन गरेपछि रावणले चाहेका कुरा भने। पिताजी

! यो रावणले मकहाँ दूत पठायो र पहिल्यै राक्षसले वास गरेको यो लङ्का मलाई दिनुहोस् भन्ने सन्देश पठायो। त्यसकारण मैले जे गर्नुपर्छ, त्यो भन्नुहोस्। कुवेरले यस्तो भनेपछि उनै विश्रवा मुनिले त्यसो भए बाबु ! मेरो कुरा सुन भने ॥३०-३४½॥

विश्रवाले भने- रावणले मुनिहरूको नजिकमा मलाई पनि यस्तो भनेको थियो। मैले हकारे पनि दुष्ट बुद्धि भएकोले त्यसले धेरै पटक भन्यो। रीसले बारबार नाश भएस् भने पनि हे बाबु ! धर्म, अर्थले युक्त मेरो कुरा सुन। डर लाग्दो स्वभाव भएको त्यो मेरो सरापबाट पनि डराउँदैन। त्यसैले परिवारसहित बस्नका लागि तिमी कैलाश पर्वतमा जाऊ। तिम्रो कल्याण हुनेछ। सुनको लङ्कालाई छोडिद्यौ। त्यहाँ सुनहरूले र सूर्यजस्ता कमलहरूले सिँगारिएको पानी भएका नदीहरूमा श्रेष्ठ मन्दाकिनी नामको नदी छ। गन्धर्वसहितका देवताहरू, अप्सरा र किन्नरहरू सबै पर्वतमा विहार गर्दै रमाउँछन् ॥३५-४०॥

बाबु ! तिमी पनि त्यही राम्रो पर्वतमा रमाऊ। कुवेर ! यो राक्षससँग वैरभाव गर्नु तिम्रा लागि राम्रो छैन। जानिहालेका छौ, त्यसले ठूलो वर पाएको छ। आफ्ना बाबु विश्रवाको आज्ञालाई हुन्छ भनेर तिनले हात जोडेर बाबुलाई अभिवादन गरेर फेरि चाँडै नै लङ्का गए र प्रहस्तलाई भने। रावणकहाँ जाऊ र जुन मेरो राज्य र शहर छ यो तिम्रो पनि हो। त्यो सबै अकण्टक भईकन भोग गर। तिमीसँग बण्डा नभएको राज्य र मेरा सम्पत्ति जे छन्, ती पनि भोग गर भनी भन ॥४१-४४॥

म बस्नका लागि सँगै जानेहरूका साथ कैलाश जान्छु। लङ्कामा गएर बस, तिम्रो कल्याण होस्। आफ्नो धर्मको पनि पालना गर। पुरवासी, पत्नी, सचिव,वाहन र धनसहितका कुवेर यस्तै भनेर ठूलो दलबलसहित कैलाशमा गए। ठूला मन्त्री र भारदारसहित भएका रावण गएर खुसी भएका प्रहस्तले यी कुरा भने - त्यो लङ्का शहर शून्य छ। यसलाई छोडेर कुवेर गए। हे महाबाहु ! तपाईं पस्नुहोस् र आफ्नो धर्मको पालना गर्नुहोस्। प्रहस्तले यस्तो भनेपछि दाजुभाइसहितका र पछि लाग्नेहरू सहितका राक्षसराज रावण कुवेरले छोडिएको शहरमा प्रवेश गऱ्यो। त्यसपछि राक्षसहरूले अभिषेक गरे अनि दशग्रीव रावण शहरमा बस्यो। त्यो शहर पनि काला बादल जस्ता राक्षसहरूले भरिभराउ भएको भयो ॥४५-५०॥

स्कन्दपुराण अन्तर्गत हिमवत्खण्डमा नेपालमाहात्म्यको पच्चीसौं अध्याय सकियो।

# अथ षड्विंशोऽध्यायः

सोमेश्वरलिङ्गमहिमा (सोमेश्वर लिङ्गको महिमा)

अगस्त्य उवाच

अत्र श्याम दशग्रीवो गोकर्णेश्वरसन्निधौ। तपस्यां परमां कृत्वा त्रैकोक्ये दुर्जयोऽभवत् ॥१॥
देवेन्द्रं स्ववशे कृत्वा जित्वा सर्वान् महीपतीन्। नागलोकं वशे कृत्वा तस्थौ लोकेश्वरो बली ॥२॥

मार्कण्डेय उवाच

जैमिने मुनिशार्दूल स मुनिः कुम्भसम्भवः। दशग्रीवसमुत्पत्तिमुक्त्वा कारुणिकेश्वरम् ॥३॥
मुनिभिर्वेष्टितो भूत्वा ययौ चन्द्रसमन्वितः। चन्द्रमास्तत्र दानानि दत्त्वा कारुणिकेश्वरम् ॥४॥
दृष्ट्वा स प्रययौ धीरो द्रष्टुं वै वज्रयोगिनीम्। वज्रां देवीं समभ्यर्च्य यथाविभवविस्तरैः ॥५॥
द्रष्टुं नारायणं देवं ययौ दोलागिरिं विधुः। अनन्तलिङ्गमालोक्य सर्वपापप्रणाशनम् ॥६॥
पुनः कुम्भेश्वरं द्रष्टुं जगामागस्त्यसंयुतः। गत्वा किंचित् ततो दूरं जगामागस्त्यसंयुतः।
गत्वा किंचित् ततो दूरं विश्रान्तोऽगस्त्यसंयुतः ॥७॥
ततो जलाशये एकश्चटकः सलिलं तदा। पातुं समागतं वीक्ष्य श्येन एकः प्रधावितः ॥८॥
श्येनो गृहीत्वा चटकं दृष्ट्वा चन्द्रः कृपान्वितः। त्याजयामास चटकं चन्द्रमा मुनिपुङ्गव ॥९॥
मुमूर्षुं चटकं दृष्ट्वा चन्द्रमास्तं जलाशये। स्थापयामास कृपया घटसम्भवसंयुतः ॥१०॥
प्राणांस्तत्याज चटकस्तस्मिंस्तीर्थे मनोहरे। ततो दिव्यतनुर्भूत्वा तप्तकाञ्चनभूषणः ॥११॥
बभूव चटकः सद्यस्तत्र त्यक्त्वा कलेवरम्। शिवरूपधरास्तत्र शिवदूताः समागताः ॥१२॥
विमानवरमादाय ज्वलत्पावकतेजसः। विमाने स्थापयामासुर्विद्याधरमिवापरम् ॥१३॥
चामरैर्वीज्यमानं तं द्वितीयमिव भास्करम्। विस्मितोऽभूत् क्षपानाथो मुनिभिः परिवारितः ॥१४॥
भूत्वा च विस्मितश्चन्द्र उवाच घटसम्भवम्। स्थापयिष्यामि तीर्थेऽस्मिन् शिवलिङ्गं मनोहरम् ॥१५॥
चटकस्य चरित्रं हि दृष्ट्वा हर्षसमागतः। चन्द्रस्य वचनं श्रुत्वा प्राह वै घटसम्भवः ॥१६॥

स्थापयात्र महालिङ्गं तीर्थे परमदुर्लभे। ततो विधुर्मुनिप्रोक्तैर्मन्त्रैः परमपावनैः ॥१७॥
स्वनाम्ना स्थापयामास लिङ्गं विभवविस्तरैः। स्थापनादेव लिङ्गस्य निशानाथः स्वकां प्रभाम् ॥१८॥
प्रतिपेदे मुनिश्रेष्ठमुनीनामग्रतस्तदा। ततः प्रोवाच भगवानगस्त्यो मुनिसत्तमः ॥१९॥

अगस्त्य उवाच

शृण्वन्तु मुनयः सर्वे यथार्थं वचनं मम। सोमेन स्थापितं यस्माच्छिवलिङ्गमनुत्तमम् ॥२०॥
सोमलिङ्गं ततो विप्रा नाम चास्य भविष्यति। नरश्चटकतीर्थे हि स्नात्वा भक्तिपरायणः ॥२१॥
सोमलिङ्गप्रभुं दृष्ट्वा मुच्यते घोरकिल्विषात्। चतुर्दश्यां सोमवारे सोमलिङ्गं वरं भुवि ॥२२॥
ये च द्रक्ष्यन्ति मनुजास्तेषां सिद्धिः करस्थिता। हेलयाऽपि च ये लोकाः सोमलिङ्गं शुभोदयम् ॥२३॥
द्रक्ष्यन्ति सोमवारे वैतेऽपि स्युः शिववल्लभाः। तीर्थे हि कलविङ्कस्य जलस्पर्शेन मानवः ॥२४॥
मुच्यते घोरपापेभ्यो नात्र कार्या विचारणा। सत्यं सत्यं पुनः सत्यं शृण्वन्तु मुनयो वचः ॥२५॥
सोमलिङ्गस्य भक्तानां नापत् कुत्रापि वर्तते। सोमलिङ्गस्य भक्तानां धनधान्यं भविष्यति ॥२६॥
इत्युक्त्वा स मुनीन् सर्वानगस्त्यः कुम्भसम्भवः। उवाच चन्द्रं विधिवत् पूजयाशु महेश्वरम् ॥२७॥
चतुर्वेदोक्तमन्त्रैश्च मुनीनां मुखनिःसृतैः। पूजयामास विधिवत् सोमलिङ्गं कलानिधिः ॥२८॥

मार्कण्डेय उवाच

पूजयित्वा यथान्यायं चन्द्रः सोऽगस्त्यसंयुतः। मुनिभिर्वेष्टितो भूत्वा कुम्भेश्वरशिवं ययौ ॥२९॥
कुम्भेश्वरं पूजयित्वा स मुनिः कुम्भसम्भवः। हरसिद्धं समालोक्य दक्षिणाशां ययौ तदा ॥३०॥
चन्द्रोऽपि निर्मलो भूत्वा स्वर्लोकं प्रजगाम हि। यज्ञभागं ययुः सर्वे मुनयो लोकपूजिताः ॥३१॥
स्वं स्वं स्थानं ययुः सर्वे मुनयो लोकपूजिताः। सोमलिङ्गसमुत्पत्तिं यः शृणोति नरोत्तमः ॥३२॥
इह लोके सुखं भुक्त्वाऽप्यन्ते स्वर्गमवाप्नुयात्। प्रायः कलियुगे कोऽपि सोमलिङ्गस्य तत्त्वतः ॥३३॥
न वेद महिमानं वै जैमिने मुनिसत्तम। इति ते कथितं विप्र किमन्यच्च्छ्रोतुमिच्छसि ॥३४॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये षड्विंशोऽध्यायः ॥२६॥

---

अगस्त्यले भने – हे श्याम ! यहीं गोकर्णेश्वरको नजिकमा ठूलो तपस्या गरेर रावण तीनै लोकमा जित्न नसकिने भयो। सबै राजाहरूलाई जितेर इन्द्रलाई आफ्नो वशमा बनाई नागलोकलाई पनि वश गरेर बलियो राजा भएर रह्यो ॥१–२॥

मार्कण्डेयले भन्नुभयो – हे मुनि जैमिनि ! ती मुनि अगस्त्य रावणको उत्पत्तिको कथा बताएर मुनिहरूले घेरिई चन्द्रमाका साथ कारुणिकेश्वरमा गए। चन्द्रमाले त्यहाँ दान दिएर कारुणिकेश्वरको दर्शन गरी अनि ती वज्रयोगिनी हेर्न गए। विधिपूर्वक वज्रयोगिनी देवीको पूजा गरेर नारायण देवको दर्शन गर्न चन्द्रमा दोलागिरिमा गए। सबै पाप नाश गर्ने अनन्तलिङ्गलाई हेरेर अगस्त्यका साथ कुम्भेश्वरको दर्शन गर्न गए। चन्द्रमाले अगस्त्यका साथ केही टाढा गएर थकाइ मारेका थिए। त्यत्तिकैमा जलाशयमा एउटा भँगेरोलाई पानी पिउन आएको देखेर एउटा बाज दौडियो ॥३–८॥

हे मुनि ! बाजले भँगेरो समातेको देखेर दया भएका चन्द्रमाले भँगेरोलाई छुट्याए। अगस्त्यसँगै भएका चन्द्रमाले भँगेरो मर्न आँटेको देखेर दयाले गर्दा त्यसलाई जलाशयमा राखिदिए। भँगेरोले त्यहीमनोहर तीर्थमा प्राण छोड्यो। उत्तिखेरै भँगेरोको शरीर छोडेर तातेको सुनले सिँगारिएको दिव्य शरीरले सम्पन्न भयो। बलेको आगोको जस्तो तेजोमय असल विमान लिएर शिवको रूप धारण गरेका शिवका दूतहरू आए। विद्याधरलाई भैँ गरी विमानमा राखे। चमरले हम्किएको दोस्रो सूर्यजस्तो भँगेरोलाई देखी मुनिहरू सँगै भएका चन्द्रमा आश्चर्यचकित भए ॥९–१४॥

चकित भएर चन्द्रमाले अगस्त्यलाई भने – यस तीर्थमा मनोहर शिवलिङ्गको स्थापना गर्दछु। भँगेरोको चरित्र देखेर हर्षित भएका अगस्त्यले चन्द्रको वचन सुनेर भने। यो पाइ नसक्नु तीर्थमा महालिङ्गको स्थापना गर्नुहोस्। त्यसपछि मुनिहरूले भनिएका परम पवित्र मन्त्रहरूका साथ विधिपूर्वक आफ्नै नामबाट लिङ्ग स्थापना गरे। हे श्रेष्ठ मुनि ! लिङ्ग स्थापना गर्नेबित्तिकै मुनिहरूका अगाडि चन्द्रमाले आफ्नो प्रभा पाए। त्यसपछि मुनि अगस्त्यले भने ॥१५–१९॥

अगस्त्यले भने – सबै मुनि हो ! मेरो यथार्थ कुरा सुन्नुहोस्, सोमले उत्तम शिवलिङ्गको स्थापना गरेकोले यसको नाम सोमलिङ्ग हुनेछ। भक्ति भएको मानिस चटकतीर्थमा नुहाई सोमलिङ्गको दर्शन गरेपछि घोर पापबाट छुट्छ। चतुर्दशीमा र सोमवारमा असल सोमलिङ्गलाई पृथ्वीमा जुन मानिसले दर्शन गर्नेछन्, सिद्धि त तिनीहरूको हातैमा रहन्छ। शुभ उदय भएको

सोमलिङ्गलाई खेलबाडले पनि जसले सोमवारमा हेर्नेछन्। ती पनि शिवका प्यारा हुनेछन्। भँगेराको तीर्थमा गई जल छुनाले पनि मानिस घोर पापबाट छुट्छ यसमा विचारै गर्नुपर्दैन ॥२०-२४॥

हे मुनि हो ! खूब साँचो कुरा सुन्नुहोस् – सोमलिङ्गका भक्तहरूलाई आपत्ति कहीँ पनि हुँदैन। सोमलिङ्गका भक्तहरूको धनधान्य हुनेछ। घैंटेबाट जन्मेका ती अगस्त्यले सबै मुनिहरूलाई यति भनेर चन्द्रमालाई चाँडो महेश्वरको पूजा गर्नुहोस् भने। मुनिहरूका मुखबाट निस्केका चार वेदका मन्त्रहरूले सोमलिङ्गको विधिपूर्वक चन्द्रमाले पूजा गरे ॥२५-२८॥

मार्कण्डेयले भन्नुभयो – अगस्त्य साथमा भएका चन्द्रमाले क्रमअनुसार पूजा गरेर मुनिहरू वरिपरि लिएर कुम्भेश्वर शिव कहाँ गए। कुम्भेश्वरको पूजा गरेर र हरसिद्धिलाई दर्शन गरी ती मुनि अगस्त्य दक्षिण दिशातिर गए। चन्द्रमा पनि निर्मल भएर आफ्नो लोकमा गए। सबै देवताले पूजा गरिएका तिनले आफ्नो यज्ञको भाग लिए ॥३१॥ लोकले पूजिएका सबै मुनिहरू आआफ्नो स्थानमा गए। जुन उत्तम मानिसले सोमलिङ्गको उत्पत्ति सुन्छ, त्यसले यस लोकमा सुख भोगेर अन्तमा स्वर्ग पाउनेछ। हे मुनिसत्तम जैमिनि ! प्रायः कलियुगमा कसैले पनि सोमलिङ्गको महिमा तत्त्वपूर्वक जान्दैन। हे विप्र ! यस्तो तपाईंलाई भनें, अरू के सुन्न चाहनुहुन्छ ? ॥२९-३४॥

स्कन्दपुराण अन्तर्गत हिमवत्खण्डमा नेपालमाहात्म्यको छब्बीसौं अध्याय सकियो।

## अथ सप्तविंशोऽध्यायः

भृङ्गिकपटचरित्रं शापप्राप्तिश्च

(भृङ्गीको कपटचरित्र र उनलाई शिवको सराप)

सूत उवाच

मार्कण्डेयमुखोद्भूतं सोमेश्वरसमुद्भवम्। श्रुत्वा तुष्टतमो भूत्वा जैमिनिः पर्यपृच्छत ॥१॥

जैमिनिरुवाच

मार्कण्डेय महाभाग साधुसाधुमुनीश्वर। त्वद्वक्त्राम्बुजनिर्यातां कथाममृतरूपिणीम् ॥२॥
पिबतो नास्ति मे तृप्तिः सन्तोषश्च परोऽभवत्। सोमलिङ्गसमुत्पत्तिं दशग्रीवकथान्विताम् ॥३॥
श्रुत्वा मे परमस्तोषो जातश्च मुनिसत्तम। अन्यान्यपि च लिङ्गानि सोमलिङ्गसमानि च ॥४॥
ब्रह्मन् कथय मे भूयः श्लेष्मान्तकवने मुने। इति जैमिनिवाक्येन प्रेरितो मुनिसत्तमः ॥५॥

मार्कण्डेय उवाच

मार्कण्डेयो महाभागः पुनराह कथां शुभाम्। जैमिनेऽहं प्रवक्ष्यामि भृङ्गीश्वरसमुद्भवम् ॥६॥
यस्य श्रवणमात्रेण सर्वपापैः प्रमुच्यते। पुरा कैलासशिखरे नानाधातुविचित्रिते ॥७॥
नानानिर्झरणोपेते नानाद्रुमसमन्विते। अप्सरोगणसङ्कीर्णे सिद्धविद्याधरान्विते ॥८॥
मन्दाकिनीस्वर्णपद्मसमूहैश्च विराजिते। कामधेनुसमाकीर्णे कल्पद्रुमसमन्विते ॥९॥
नानापक्षिनिनादेन सदा श्रुतिमनोहरे। नानाविधैः शिवगणैः समन्तात् परिवेष्टिते ॥१०॥
व्याघ्राननैर्बिडालास्यैः शार्दूलवदनैस्तथा। अपादैर्बहुपादैश्च ह्रस्वपादैस्तथैव च ॥११॥
अकर्णैर्बहुकर्णैश्च गोकर्णैः खरकर्णकैः। अश्वकर्णैरुष्ट्रकर्णैर्गजकर्णैर्महोदरैः ॥१२॥
कुब्जैर्वानरकदीर्घैर्विकटैदन्तुरैस्तथा। उदरास्यैर्महास्यैश्च बहुहस्तैस्तथैव च ॥१३॥
वानरास्यैर्वराहास्यैर्हस्तशून्यैस्तथैव च। एवं विधगणैस्तत्र समन्तात् परिवारिते ॥१४॥
व्याघ्रचर्मसमासीनं शशाङ्कधवलं शिवम्। विभूतिभूषितं त्र्यक्षं परमानन्दरूपिणम् ॥१५॥
सुप्रसन्नमुखं दृष्ट्वा हसन्तं स्मितभाषिणम्। एकान्ते गिरिजा देवी प्रणम्य च कृताञ्जलिः ॥१६॥

पार्वत्युवाच

विनयात् परिपप्रच्छ कौतूहलसमन्विता। देवदेव महादेव शशाङ्ककृतशेखर ॥१७॥
कथां विचित्रां कथय कस्याप्यविदितां प्रभो। त्वत्तः श्रुत्वा कथां चित्रां सखीनामग्रतः प्रभो ॥१८॥

मार्कण्डेय उवाच

वक्ष्येऽहं जगतां नाथ तासां तोषो भविष्यति। पार्वत्या वचनं श्रुत्वा विहस्य जगतां पतिः ॥१९॥

नन्दिकेशं समाहूय वचनं चेदमब्रवीत्। यावद्देव्या कथा कुर्वे विचित्रे मन्दिरोत्तमे ॥२०॥
द्वारि स्थित्वा नन्दिकेश गणान् सर्वान् निवारय। महादेववचः श्रुत्वा नन्दिकेशः शिवाज्ञया ॥२१॥
द्वाःस्थो भूत्वा गणान् सर्वान् वारयामास तत्क्षणात्। ततो विचित्रभवने सह देव्या महेश्वरः ॥२२॥
गत्वा दत्त्वा कपाटं च कथां प्राह मनोहराम्। एतस्मिन्नन्तरे भृङ्गीतद्द्वारं समुपाययौ ॥२३॥
गत्वा स्वभवनं भृङ्गी चिन्तयित्वा क्षणार्धतः। भृङ्गरूपं समास्थाय ययौ तत्र महेश्वरः ॥२४॥
कपाटच्छिद्रमार्गेण भृङ्गी तत्र विवेश ह। पार्वतीपुरतः प्रोक्ताः कथाश्चामृतसन्निभाः ॥२५॥
प्रत्याह भृङ्गरूपेण भृङ्गी शुश्राव ताः कथाः। स्वस्त्रियै विजयानाम्न्यै प्रत्याह तां कथां वराम् ॥२६॥
कथयामास भृङ्गी वै महादेवमुखाच्छ्रुताम्। एकदा गिरिजा देवी विचित्रासनसंस्थिता ॥२७॥
विजयाद्याः सखीः सर्वाः प्रोवाच स्मितपूर्वकम्। कथयामि कथां दिव्यां कयाऽपि हि न श्रुताम् ॥२८॥
कृताञ्जलिपुटाः प्रोचुर्जयाद्या गिरिजां तदा। आज्ञापय महादेवि दैत्यदर्पनिषूदिनि ॥२९॥
इति तासां वचः श्रुत्वा गिरिजा हरवक्त्रतः। निर्गतां कथयामास परमानन्दतस्तथा ॥३०॥
सखीमध्यात् समुत्थाय विजया प्राह चण्डिकाम्। मयाऽपि ज्ञायते देवि कथय त्वं प्रसादतः ॥३१॥
कथयामि कथामुक्त्वा विजया प्रावदत् कथाम्। विजयावक्त्रतः श्रुत्वा कथां सा हरवल्लभा ॥३२॥
दुःखिताऽभूत् समुत्थाय ययौ च हरसन्निधौ। अतीव दुःखितां दृष्ट्वा शङ्करः प्राणवल्लभाम् ॥३३॥
प्रोवाच स्नेहपूर्वं हि विषण्णाऽसि कथं प्रिये। इति शम्भुवचः श्रुत्वा प्रोवाच गिरिजा रुषा ॥३४॥
स्फुरदोष्ठपुटद्वन्द्वा वेपमाना मुहुर्मुहुः। महादेव न जानामि हृदयं कुटिलं तव ॥३५॥
उक्ता कथा या भवता सङ्गोपनपरेण च। मदग्रे जगतां नाथ त्वयैव विजयाऽपि च ॥३६॥
सखीनामग्रतो लज्जा मम जाता महेश्वर। इति तस्या वचः श्रुत्वा प्रोवाच गिरिजां हरः ॥३७॥
मा विषीद वरारोहे यावद्ध्यानं करोम्यहम्। इत्युक्त्वा गिरिजां नाथो दध्यौ तस्मिन् क्षणे मुने ॥३८॥
ध्यात्वा तु कारणं ज्ञात्वा चाहूय भृङ्गिणं शिवः। क्रोधसंरक्तनयनः शशापाशु स भृङ्गिणम् ॥३९॥
त्वया कपटपूर्वं हि भृङ्गरूपेण चाधम। रहोवार्ता श्रुता यस्माद्देव्यग्रे च मयोदिता ॥४०॥
अतो ध्वंसेति कैलासान्मानुषो भव सर्वथा। शापं सुदारुणं लब्ध्वा भृङ्गी देवान्महेश्वरात् ॥४१॥

भृङ्ग्युवाच

दण्डवत् प्रणिपत्याग्रे वचनं चेदमब्रवीत्। अजानता मया देव चरितं विप्रियं तव ॥४२॥
क्षन्तव्यो मेऽपराधस्तु देवदेव महेश्वर। मन्दस्य मम दुष्टस्य चापराधः पदे पदे ॥४३॥
अन्तरेण महादेव कः सहेतापरः प्रभुः। इति भृङ्गिवचः श्रुत्वा महादेवः कृपानिधिः ॥४४॥

मार्कण्डेय उवाच

उवाच भृङ्गिन् मे वाक्यं न कदाऽपि मृषा भवेत्। पृथिव्यां ब्राह्मणो भूत्वा विद्यावान् धार्मिकः कृती ॥४५॥
नवलक्षमिता गाथाः कृत्वा रससमन्विताः। शिवलिङ्गं हि संस्थाप्य क्षेत्रे परमदुर्लभे ॥४६॥
मानुष्यं हि परित्यज्य कैलासं पुनरेष्यसि। इति शङ्करवाक्यान्ते भृङ्गी परमदुःखितः ॥४७॥
पतितः पृथिवीमध्ये स्वापराधेन जैमिने। पुत्रोऽभूद्विष्णुदत्तस्य मथुरायां सुतेजसः ॥४८॥
जातकर्मादिकं चास्य पिता चक्रे समाहितः। गुणाढ्य इति तन्नाम पृथिव्यां प्रश्रितं तदा ॥४९॥
पपाठ सकला विद्या मुने व्याकरणादिकाः। स सर्वशास्त्रवेत्ताऽभूद्गुणाढ्यो द्विजसत्तम ॥५०॥
पितर्युपरते सोऽथ गुणाढ्यो गुणसंयुतः। ययावुज्जयिनीं धीरो मदनो यत्र भूपतिः ॥५१॥
आचार्यः सर्ववर्माऽभून्मदनद्वारि पण्डितः। स परीक्ष्य महाबुद्धिं गुणाढ्यं कविपण्डितम् ॥५२॥
कथयामास भूपाल सर्ववर्मा बुधोत्तमः। यथार्थनामा नृपते गुणाढ्योऽयं द्विजोत्तमः ॥५३॥
योग्योऽथ भवतो द्वारि वृत्तिरस्मै प्रदीयताम्। सर्ववर्मवचः श्रुत्वा राज्ञा सुस्थापितो द्विजः ॥५४॥
द्वारे मदनभूपस्य पण्डितः सर्वदा स्थितः। मुने मदनभूपस्य भार्याऽभूदतिसुन्दरी ॥५५॥
नाम्ना लीलावती देवी विद्या व्याकरणादिकाः। राजा व्याकरणं नैव जानाति मुनिपुङ्गवः ॥५६॥
एकदा ग्रीष्मसमये घर्मार्तो मदनो नृपः। लीलावतीसमायुक्तो जलक्रीडां चकार हि ॥५७॥

जलाञ्जलिप्रदानेन परस्परमभीक्ष्णशः। चिक्रीडतुर्दम्पती तौ सखीभिः परिवारितौ ॥५८॥
जलाञ्जलिप्रदानेन खिन्ना लीलावती पतिम्। प्राह नाथ परिश्रान्ता मोदकं देहि सर्वथा ॥५९॥
प्रस्तावसदृशं वाक्यमबुध्वा नृपतिस्तदा। लड्डुका दापयामास नानारससमन्विताः ॥६०॥
एतादृशं पतिं बुध्वा ज्ञानशून्यं मुने तदा। लीलावती जहासोच्चैर्विषण्णा चाभवत् क्षणात् ॥६१॥
उच्चैर्हाससमायुक्ता विषण्णा तदनन्तरम्। व्रीडितोऽभून्नरपतिर्मदनो मुनिपुङ्गव ॥६२॥
एकान्ते सर्ववर्माणमाचार्यं पण्डितोत्तमम्। गुणाढ्यं च तथाऽऽहूय राजा वचनमब्रवीत् ॥६३॥

राजोवाच

मत्पण्डितावुभावेव भवन्तौ गुणसंयुतौ। मया जलविहारेऽद्य लज्जा लब्धा कलत्रतः ॥६४॥
प्राह लीलावती मां तु मोदकं देहि भूपते। इति तस्या वचः श्रुत्वा ततोऽहं द्विजसत्तमौ ॥६५॥
मोदकानां सहस्रं हि ददौ तस्यै क्षणार्धतः। सा जहास तदा राज्ञी विषण्णा चाभवत् क्षणात् ॥६६॥
ततो विषादो मे जातो लज्जा च महती पुनः। कोऽर्थो मोदकशब्दस्य भवेद्ब्राह्मणसत्तमौ ॥६७॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये सप्तविंशोऽध्यायः ॥२७॥

---

सूतले भने – मार्कण्डेयको मुखबाट निस्केको सोमेश्वरको उत्पत्ति सुनी खूब खुसी भएर जैमिनिले सोधे ॥१॥

जैमिनिले भने – हे महाभाग मुनीश्वर मार्कण्डेय ! राम्रो राम्रो तपाईंको मुख कमलबाट निस्केको अमृतरूप कथा पिउँदा मेरो तृप्ति नै हुँदैन, सन्तोष भने खूबै भयो। हे मुनि ! रावणको कथासहित सोमलिङ्गको उत्पत्ति सुनेर मलाई खूब सन्तोष भयो। हे ब्राह्मण मुनि! श्लेष्मान्तक वनमा रहेका सोमलिङ्गजस्ता अरू लिङ्गहरू मलाई फेरि भन्नुहोस्। जैमिनिका यस्ता कुराले प्रेरित भएका महाभाग मार्कण्डेय मुनिले फेरि राम्रो कथा भने ॥२–५॥

मार्कण्डेयले भने – हे जैमिनि ! म भृङ्गीश्वरको उत्पत्तिको कथा भन्छु। जुन सुन्नाले मात्रै पनि सबै पापबाट छुटिन्छ। विभिन्न धातुहरूले विचित्र भएको, अनेक किसिमका झरनाहरू, विभिन्न रुखहरू र अप्सराहरूले भरिएको, सिद्ध विद्याधर, मन्दाकिनी र सुनका कमल भएको, कामधेनुहरू र कल्पवृक्षहरू भएको विभिन्न चराहरूका आवाजले गर्दा सधैँ सुनिरहूँ जस्तो भएको र अनेक शिवका गणहरूले चारैतिरबाट घेरिएको, बाघको मुख भएका, बिरालोको मुख भएका, सिंहको जस्तो मुख भएका, खुट्टै नभएका, धेरै खुट्टा भएका, छोटा भएका कानै नभएका, धेरै कान भएका गाईको जस्तो कान भएका, गधाको जस्तो कान भएका, घोडाको जस्तो कान भएका, ऊँटको जस्तो कान भएका, हात्तीको जस्तो कान भएका, ठूलो पेट भएका, कुब्ज वानर, लामा र नमिलेका दन्तुर पेट जस्तो मुख भएका, ठूलो मुख भएका, धेरै हात भएका, बाँदरको जस्तो मुख भएका, बँदेलको जस्तो मुख भएका र हातै नभएका यस्ता गणहरूले चारैतिरबाट घेरिएको कैलाशको चुचुरामा बाघको छालामा बसेका चन्द्रमाजस्ता सेता विभूतिले सिँगारिएका परमानन्दरूपी प्रसन्न मुख भएका हँसिला र मुस्कुराएर बोल्ने शिवलाई देखेर एकान्तमा कौतूहल भएकी गिरिजा देवीले हात जोरेर प्रणाम गरी नम्रतापूर्वक सोध्नुभयो ॥६–१६½॥

पार्वतीले भन्नुभयो – देवताका पनि देवता चन्द्रमालाई शिरको गहना बनाएका हे महादेव प्रभु ! कसैले पनि नजानेको अनौठो कथा भन्नुहोस्। प्रभु ! तपाईंबाट विचित्र कथा सुनेर मैले सखीहरूका अगाडि भन्ने छु। जगत्का मालिक ! अनि तिनीहरूखुसी हुनेछन् ॥१७–१८½॥

मार्कण्डेयले भन्नुभयो – पार्वतीको कुरो सुनी जगत्का पतिले हाँसेर नन्दिकेशलाई बोलाई यो कुरो भन्नुभयो। जुन बेलासम्म विचित्रको यो श्रेष्ठ मन्दिरमा कथा भन्छु, त्यहाँसम्म हे नन्दिकेश ! ढोकामा बसेर सबै गणहरूलाई हटाऊ। भगवान् शिवको आज्ञा अनुसार ढोकामा रहेर नन्दिकेशले उत्तिखेरै सबै गणहरूलाई हटाए। त्यसपछि विचित्र घरमा गई ढोका लगाएर देवीका साथ महेश्वरले मनोहर कथा भन्नुभयो। यसै बीचमा भृङ्गी आफ्नो घरमा गए। आफ्नो घरमा गई एकै छिन विचार गरेर भृङ्गी भृङ्गको रूप लिई महेश्वर कहाँ गए ॥१९–२४॥

ढोकाको प्वालको बाटो गरेर भृङ्गी त्यहाँ पसे। पार्वतीको भनिएका अमृत जस्ता कथा भनिए। भमरोको रूप लिएका भृङ्गीले ती कथा सुने। विजया नामकी आफ्नी पत्नीलाई महादेवको मुखबाट सुनेको त्यो उत्तम कथा भृङ्गीले भने। एकदिन विचित्रको आसनमा बसेकी पार्वती देवीले मुस्कुराउँदै विजयादि गरेका सबै साथीहरूलाई कसैले पनि नसुकेको दिव्य कथा भन्छु भन्नुभयो ॥२५–२८॥

अनि हात जोरेका जयादिहरूले पार्वतीलाई दैत्यको सेखी तोड्ने हे महादेवी ! आज्ञा होस् भने। यस्तो तिनीहरूको

कुरा सुनेर पार्वतीले शिवको मुखबाट निस्केको कथा खूब आनन्दसँग बताउनुभयो। सखीहरूको बीचबाट उठेर विजयाले पार्वतीलाई भनिन्, हजूर भन्नुहोस्, निगाह भए म भन्छु भनेर विजयाले कथा भनिन्। विजयाको मुखबाट कथा सुनेर पार्वती दुःखित हुनुभयो र उठेर शिवको नजिकमा जानुभयो ॥२९–३२½॥

प्राणप्यारीलाई ज्यादै दुःखी देखेर शङ्करले माया गरेर भन्नुभयो – हे प्यारी ! किन खिन्न छौ ? यस्तो शिवको कुरो सुनेर रीसले दुबै ओठ फरफराएकी र बारम्बार काँपिरहेकी पार्वतीले भन्नुभयो – हे महादेव ! तपाईंको बाङ्गो मन म जान्दिनँ, गोप्य गरेर हजुरले मलाई जुन कथा मेरा अगाडि भन्नुभयो हे जगत्का नाथ ! त्यही कथा तपाईंले विजयालाई पनि भन्नुभएछ। हे महेश्वर ! सखीहरूको अगाडि मलाई लाजमर्नुभयो ॥३३–३६½॥

यस्तो पार्वतीको कुरा सुनेर शिवले पार्वतीलाई भन्नुभयो – सुन्दरी ! खिन्न नहोऊ, म जहाँसम्म ध्यान गर्छु। मार्कण्डेयले भन्नुभयो – हे मुनि ! पार्वतीका पतिले यति भनेर तुरुन्तै ध्यान गरे ॥३१–३८॥ ध्यान गरेपछि कारण थाहा पाई भृङ्गीलाई बोलाएर रीसले राता आँखा भएका शिवजीले त्यस भृङ्गीलाई तुरुन्तै सराप दिनुभयो – अधम ! तैंले छल गरेर भमरोको रूप लिएर मैले देवीका अगाडि भनेको एकान्तको कुरा सुनिछस्। त्यसैले कैलासबाट नाश भई मानिस भइहालेस्। महेश्वर देवबाट भृङ्गीले भयङ्कर सराप पाएपछि शिवजीका अगाडि लौरोझैं पस्रिएर भृङ्गी भन्न लागे ॥३७–४१½॥

भृङ्गीले भने – हे देव ! मैले नजानेर तपाईंको मन नपर्ने काम गरें। देवताका पनि देव हे महेश्वर ! मेरो अपराध क्षमा गरिदिनुहोस्। मन्द र दुष्ट मेरो पाइला पाइलामा भएको अपराध महादेव बाहेक अर्को मालिकले सहला र ? ॥४२–४४॥

मार्कण्डेयले भन्नुभयो – यस्तो भृङ्गीको कुरो सुनेर दयाका खानी महादेवले भन्नुभयो – भृङ्गी ! मेरो वाक्य कहिल्यै झूटो हुँदैन। पृथिवीमा विद्यावान्, धार्मिक र सन्तुष्ट ब्राह्मण भएर रसले युक्त भएका नौ लाख गाथा रचेर अनि पाइनसक्नु क्षेत्रमा शिवलिङ्गको स्थापना गरेपछि मानिसको चोला छोडेर फेरि कैलासमा आउनेछौ ॥४५–४६½॥

हे जैमिनि ! शङ्करको यस्तो वाक्यपछि ज्यादै दुःखी भएको भृङ्गी आफ्ना अपराधद्वारा पृथिवीमा खसे। मथुराका तेजिला विष्णुदत्तका छोरा भए। एकाग्र चित्त भएका यिनका बाबुले जातकर्मादि गरे। अनि यी पृथिवीमा गुणाढ्य नामले प्रख्यात भए। श्रेष्ठ ब्राह्मण हे मुनि ! ती गुणाढ्यले व्याकरण आदि सबै विद्या पढे र सबै शास्त्र जान्ने भए ॥५०॥ पिता मरेपछि गुणले युक्त भएका धीर गुणाढ्य उज्जयिनी गए, जहाँ राजा मदन थिए ॥५१॥ मदनको द्वारपण्डित सर्ववर्मा थिए। सर्ववर्माले धेरै बुद्धि भएका कवि, पण्डित गुणाढ्यको परीक्षा गरे। त्यसपछि विद्वान्मा श्रेष्ठ बनेका तिनले राजालाई भन्न लागे ॥४७–५२½॥

सर्ववर्माले राजालाई भने – राजा ! श्रेष्ठ ब्राह्मण यी गुणाढ्य नाम अनुसारका छन्। हजुरको ढोकामा रहन योग्य छन्। यिनलाई वृत्ति दिनुहोस्। हे मुनि ! मदन राजाकी खूब राम्री लीलावती नामकी भार्या थिइन् र व्याकरण आदि विद्या जान्दथिन्। हे श्रेष्ठ मुनि ! राजा व्याकरण जान्दै जान्दैनथे। एक दिन ग्रीष्मको समयमा लीलावती गर्मीले सताइएका मदन राजाले जलक्रीडा गरे। परस्परमा खूबसँग पानीका अञ्जुली दिएर साथीहरू वरिपरि भएका ती दम्पती खेले ॥५३–५८॥

अँजुलीले पानी छ्याप्नाले थाकेकी र खिन्न भएकी लीलावतीले पतिलाई भनिन् – नाथ ! मोदक दिनुहोस्। राजाले प्रस्तावजस्तो वाक्य नबुझेर विभिन्न रस भएका लड्डु दिंदा भए। हे मुनि ! पतिलाई ज्ञानै नभएको बुझेर लीलावती जोरसँग खित्का छोडेर हाँसिन् र उत्तिखेरै खिन्न पनि भइन्। हे श्रेष्ठ मुनि! पहिल्यै खित्का छोडेर हाँसेकी र त्यसपछि खिन्न भएकी देखेर मदन राजा लज्जित भए। एकान्तमा श्रेष्ठ पण्डित आचार्य सर्ववर्मालाई र गुणाढ्यलाई पनि बोलाएर राजाले समस्या राखे ॥५९–६३॥

राजाले भने – तपाईंहरूदुबै नै गुणले युक्त मेरा पण्डितहरू हुनुहुन्छ। मैले आज जलविहारमा रानीबाट लाज पाएँ। हे ब्राह्मणहरू हो !लीलावतीले मलाई मोदक दिनुहोस् राजा !भनिन्, त्यस्तो तिनको कुरा सुनेर मैले त उत्तिखेरै हजारौं लड्डूहरू तिनलाई दिएँ अनि त रानी हाँसिन् र उत्तिखेरै खिन्न पनि भइन्। त्यसपछि म खिन्न भएँ। फेरि ठूलो लाज पनि भयो। हे ब्राह्मण हो !मोदक शब्दको अर्थ के हो हैं ? ॥६४–६७॥

स्कन्दपुराण अन्तर्गत हिमवत्खण्डमा नेपालमाहात्म्यको सत्ताइसौं अध्याय सकियो।

# अथ अष्टाविंशोऽध्यायः

सर्ववर्मगुणाढ्ययोः शास्त्रार्थकथा (सर्ववर्मा र गुणाढ्यको शास्त्रार्थको कथा )

मार्कण्डेय उवाच

इति तस्य वचः श्रुत्वा भूपतेर्द्विजसत्तमौ। ऊचतुर्युक्तिमद्वाक्यं भूपतिं वाक्यकोविदौ ॥१॥

सर्ववर्मगुणाढ्यावूचतुः

राजँल्लीलावती राज्ञी गौडभूपस्य कन्यका। सा विद्या विविधा वेद काव्यव्याकरणादिकाः ॥२॥
उदकं मा प्रयच्छेति तयोक्तं नृपसत्तम। अपां विहारे भवता प्रस्तावो नावधारितः ॥३॥
अतस्तया च हसितं नान्यदस्तीह कारणम्। एवं वचस्तयोः श्रुत्वा मदनः प्राह तौ पुनः ॥४॥
कालेन कियता विप्रौ ज्ञानं व्याकरणे मम। भवेत् तद्द्विजशार्दूलावेष मे संशयो महान् ॥५॥
इति तस्य वचः श्रुत्वा गुणाढ्यः प्राह भूपतिम्। अब्दैर्द्वादशभिर्भूप ज्ञानं व्याकरणे तव ॥६॥
अहं हि कारयिष्यामि नात्र कार्या विचारणा। गुणाढ्यवचनं श्रुत्वा सर्ववर्मा बुधाग्रणीः ॥७॥
राजानं प्राह राजेन्द्रं ज्ञानं व्याकरणे तव। वर्षद्वयेन सम्पूर्णं कारयिष्याम्यहं किल ॥८॥

राजोवाच

इति तस्य वचः श्रुत्वा भूपतिः प्राह तं पुनः। यदि वर्षद्वयेनैव ज्ञानं व्याकरणे मम ॥९॥
कारयिष्यामि विप्रेन्द्र राज्यस्यार्धं ददामि ते।

मार्कण्डेय उवाच

एवं तयोर्वचः श्रुत्वा गुणाढ्यः प्राह भूपतिम् ॥१०॥

गुणाढ्य उवाच

यदि वर्षद्वयेनैव ज्ञानं व्याकरणे तव। सर्ववर्मा कारयति तदा शास्त्रं त्यजाम्यहम् ॥११॥
तुभ्यं दत्त्वा हि सर्वस्वं यास्यामि गहनं खलु। संस्कृतस्य परित्यागं यावज्जीवं करोम्यहम् ॥१२॥
इति तस्य वचः श्रुत्वा सर्ववर्मा द्विजोत्तमः। प्रतिज्ञापूर्वकं प्राह गुणाढ्यं गुणभूषितम् ॥१३॥
यदि वर्षद्वयादर्वाग्ज्ञानं व्याकरणे दृढम्। न शक्यते मया कर्तुं नरेन्द्रस्य द्विजोत्तम ॥१४॥
यावज्जीवं परित्यागं संस्कृतस्य करोम्यहम्। सर्वस्वं भवते दत्वा यास्यामि गहनं ध्रुवम् ॥१५॥
इति प्रतिज्ञां कृत्वा हि समुत्थाय गृहं ययौ। रात्रावाराधयामास कुमारं हरनन्दनम् ॥१६॥
धूपैर्दीपैश्च नैवेद्यैः परां भक्तिं समाश्रितः। प्रसन्नश्च कुमारोऽभून्निशीथे सर्ववर्मणे ॥१७॥
तं विलोक्य नमश्चक्रे सर्ववर्मा द्विजोत्तमः। विनतं तं समालोक्य प्रोवाच हरनन्दनः ॥१८॥

कुमार उवाच

वरं वरय विप्रेन्द्र प्रसन्नोऽस्मि न संशयः। कुमारवाक्यमाकर्ण्य सर्ववर्माऽवदत् पुनः ॥१९॥

सर्ववर्मोवाच

यदि प्रसन्नो मे देव स्वल्पं व्याकरणं तदा। देहि मे मदनो येन पण्डितो भवति ध्रुवम् ॥२०॥
इति तस्य वचः श्रुत्वा कुमारोऽमितविक्रमः। कलापाख्यं व्याकरणं ददौ कृत्वा द्विजन्मने ॥२१॥
आचार्योऽपि तदादाय पुस्तकं मदनं नृपम्। पाठयामास यत्नेन पण्डितो मदनोऽभवत् ॥२२॥
मदनस्य दृढं ज्ञानं दृष्ट्वा व्याकरणे तदा। गुणाढ्यो लज्जितो भूत्वा सर्वस्वं सर्ववर्मणे ॥२३॥
दत्त्वा त्यक्त्वा संस्कृतं च जगाम गहनं खलु। तत्राश्रमं विधायाशु गुणाढ्योऽप्यतिसुन्दरम् ॥२४॥
विभूतिभूषितो नित्यं जटाजूटसमन्वितः। रुद्राक्षमालया नित्यं शिवनाम जजाप हि ॥२५॥
एकदा ह्याश्रमे तस्य पुलस्त्यो मुनिसत्तमः। समागतो दैवयोगान्मुनिभिः परिवारितः ॥२६॥
तमागतमभिप्रेक्ष्य पुलस्त्यं मुनिसत्तमम्। प्रत्युद्ययावादरेण गुणाढ्यो गुणसंयुतः ॥२७॥
आसने तं समावेश्य पाद्यादिभिरथो मुने। गुणाढ्यः पूजयामास मुनीनपि यतव्रतान् ॥२८॥
ततो विश्रान्तमासीनं पुलस्त्यं मुनिसंयुतम्। गुणाढ्यः परिपप्रच्छ भाषया नतकन्धरः ॥२९॥

गुणाढ्य उवाच

सर्वा कथा मे विदिता भवता मुनिसत्तम। निस्तारस्तु कथं मे स्यात् तदाचक्ष्व दयानिधे ॥३०॥

मार्कण्डेय उवाच

इति तस्य वचः श्रुत्वा पुलस्त्यो धातृनन्दनः। गुणाढ्यं पुनरेवाह सर्वज्ञो मुनिसत्तमः ॥३१॥

पुलस्त्य उवाच

पिशाचभाषया गाथा नवलक्षमिताः कुरु। ततो हि परमे पीठे नेपालाख्ये मनोहरे ॥३२॥
शिवलिङ्गं स्थापयित्वा विप्र मोक्षमवाप्स्यसि। इत्युक्त्वा स्वाश्रमं यातो मुनिभिः परिवारितः ॥३३॥
पुलस्त्यो ब्रह्मणः पुत्रो जैमिने मुनिसत्तम। ततो गुणाढ्यो गुणवान् पत्राण्यादाय शाखिनाम् ॥३४॥
धातुभिर्विलिलेखाशु कृत्वा गाथा मनोहराः। पपाठ च स्वयं गाथा गुणाढ्यो गुणिसत्तमः ॥३५॥
गाथाः श्रुत्वा हि पशवो गुणाढ्यरचितास्तदा। आहारं हि परित्यज्य तस्थुस्तस्याश्रमे सदा ॥३६॥
यदा जजाप हि मुने गुणाढ्यो गुणिनां वरः। तदा हि पशवः सर्वे ग्रासान्वेषणतत्पराः ॥३७॥
व्याधा हत्वा मृगाँस्ताँस्तु मदनस्य महीमतेः। ददौ हि सूपकारेभ्यः पेचुस्तेऽपि तदा मुने ॥३८॥
नरीसं हि परं भुक्त्वा नृपः प्राह च पाचकान्।

राजोवाच

कथं शुष्कानि मांसानि मह्यं दत्तानि पाचकाः ॥३९॥
इति तस्य वचः श्रुत्वा प्रोचुस्ते पाचका नृपम्। व्याधैराहृतमांसानि ह्यस्माभिः संस्कृतानि च ॥४०॥
पाचकानां वचः श्रुत्वा व्याधानाहूय पार्थिवः। जगाद हेतुना केन शुष्कमांसमुपागतम् ॥४१॥
इति भूपवचः श्रुत्वा व्याधाः प्रोचुर्भयातुराः। दुर्बला हरिणाः सर्वे वने जाता नरेश्वर ॥४२॥
कारणं तु न जानीमो येन ते दुर्बला मृगाः। व्याधानां वचनं श्रुत्वा व्याधान् प्राह नरेश्वरः ॥४३॥
ज्ञायतां कारणं व्याधा येन ते दुर्बला मृगाः। इति भूपवचः श्रुत्वा ययुर्व्याधा वनं तदा ॥४४॥
गत्वा तदाश्रमं रम्यं गुणाढ्यं ददृशुस्तदा। कृत्वा गाथा वदन्तं च जटिलं श्मश्रुसंयुतम् ॥४५॥
गाथाश्च शृण्वतस्तस्थुः पशूंश्च ददृशुस्तदा। गाथाः श्रुत्वाऽथ ते तस्थुस्तत्रैव विपिने मुने ॥४६॥
चकार भोजनं राजा तदा मांसविवर्जितम्। सूपकारांश्च प्रपच्छ कोपसंरक्तलोचनः ॥४७॥
कथमद्य समानीतं भोजनं मांसवर्जितम्। इत्याकर्ण्य नरेन्द्रस्य वचः कोपसमन्वितम् ॥४८॥
सूपकारास्तदा प्रोचुर्मुने प्राञ्जलयो नृप।

सूपकारा ऊचुः

मांसार्थं विपिने ये च व्याधा यान्ति नरेश्वर ॥४९॥
न हि ते विनिवर्त्तन्ते यमलोकं गता इव। इति तेषां वचः श्रुत्वा राजा बुद्धिमतां वरः ॥५०॥
सर्ववर्माचार्ययुक्तो जगाम विपिनं तदा। स ददर्श नृपो धीरं गुणाढ्यं गुणिनां वरम् ॥५१॥
कथयन्तं कथाश्चित्रा नानाश्चर्यसमन्विताः। तत्कथाश्रवणामोदत्यक्तग्रासान् पशूंस्तदा ॥५२॥
ददर्श दुर्बलान् भूपो मेदोमांसविवर्जितान्। आत्मनश्च रसोत्पत्तिं ज्ञात्वा भूपतिसत्तमः ॥५३॥
ववन्दे गुणिनां श्रेष्ठं गुणाढ्यं धर्मतत्परम्। गुणाढ्योऽपि ततो दृष्ट्वा सर्ववर्माणमागतम् ॥५४॥
ननाम गुरुवद्धीरो ददौ भूपाय चाशिषम्। चकार विधिवत् पूजां तयोर्द्विजनरेन्द्रयोः ॥५५॥
ततो नरपतिः प्राह सर्ववर्ममते स्थितः। गुणाढ्य यामो नगरं यथापूर्वस्थितिं कुरु ॥५६॥

गुणाढ्य उवाच

इति भूपतिवाक्यान्ते गुणाढ्यः प्राह भूपतिम्। जानामि सर्वं नृपते तवास्मीति निगद्यते ॥५७॥
पिशाचभाषया राजन् कृता गाथा मनोहराः। नवलक्षमितास्तास्त्वं संस्कृतेन लिखापय ॥५८॥
अहं यास्यामि नेपालं क्षेत्राणां क्षेत्रमुत्तमम्। इत्युक्त्वा प्रददौ तानि शाखिपत्राणि जैमिने ॥५९॥
आदाय तानि नृपतिः स्वकीयां नगरीं ययौ। तदा ययौ गुणाढ्योऽपि श्लेष्मान्तकवनं मुने ॥६०॥
इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्येऽष्टविंशोऽध्यायः ॥२८॥

मार्कण्डेयले भने – ती राजाको यस्तो वचन सुनेर कुरामा सिपालु दुवै असल ब्राह्मणहरूले राजालाई युक्तियुक्त वचन भने ॥१॥

सर्ववर्मा र गुणाढ्यले भने – हे राजा ! रानी लीलावती गौड राजाकी छोरी हुनुहुन्छ। उहाँ विभिन्न किसिमका काव्य र व्याकरण आदि जान्नुहुन्छ। राजा उहाँले जलविहारमा मोदकं देहि भनेर पानी नदिनुहोस् भन्नुभयो, हजूरले प्रसङ्ग बुझ्नुभएन। यसैले उहाँ हाँस्नुभयो यसमा अर्को कुनै कारण छैन। ती दुईको यस्तो कुरा सुनेर मदनले ती दुवैलाई फेरि भने। हे ब्राह्मण हो! कति समयमा व्याकरणमा मेरो ज्ञान होला ?हे श्रेष्ठ ब्राह्मण हो! यसमा मेरो ठूलो शङ्का छ ॥२–५॥

यस्तो उनको कुरा सुनेर गुणाढ्यले राजालाई भने – हे राजा ! बाह्र वर्षमा व्याकणको ज्ञान तपाईंलाई म गराउँछु, यसमा शङ्का नै छैन। गुणाढ्यको कुरा सुनेर पण्डितहरूमा अग्रणी सर्ववर्माले राजालाई भने – हे राजा ! म दुई वर्षमै तपाईंलाई व्याकरण जान्ने गराउँछु ॥६–८॥

तिनको यस्तो कुरा सुनेर राजाले फेरि तिनलाई भने – हे श्रेष्ठ ब्राह्मण! यदि दुई वर्षमा मलाई व्याकरण जान्ने बनाउनुहुन्छ भने आधा राज्य तपाईंलाई दिन्छु ॥९॥

मार्कण्डेयले भन्नुभयो – ती दुईको यस्तो कुरा सुनेर गुणाढ्यले राजालाई भन्न लागे ॥१०॥

गुणाढ्यले भने – यदि सर्ववर्माले दुई वर्षमै तपाईंलाई व्याकरण जान्ने गराएभने म शास्त्र नै छोड्छु। तपाईंलाई सर्वस्व दिएर वनमा जानेछु र बाँचुञ्जेल म संस्कृतकै त्याग गर्नेछु। यस्तो तिनको कुरा सुनेर गुण भएका गुणाढ्यलाई श्रेष्ठ ब्राह्मण सर्ववर्माले प्रतिज्ञासाथ भने ॥१३॥ हे श्रेष्ठ ब्राह्मण ! यदि दुई वर्षभन्दा अघि नै व्याकरणमा राजाको ज्ञान दृढ गराउन सकिनँ भने बाँचुञ्जेल संस्कृत छोड्नेछु। सर्वस्व तपाईंलाई दिएर वनमा जानेछु। यस्तो प्रतिज्ञा गरी दुवै उठे र घर गए। राती सर्ववर्माले शिवका छोरा कुमारलाई धूप, दीप, नैवेद्यद्वारा खूब भक्तिपूर्वक आराधना गरे। सर्ववर्मासँग राती नै कुमार प्रसन्न भए। तिनलाई देखेर श्रेष्ठ ब्राह्मण सर्ववर्माले नमस्कार गरे, नम्र ती सर्ववर्मालाई देखेर शिवका छोरा कुमारले भन्नुभयो ॥११–१८॥

कुमारले भन्नुभयो – हे विप्रेन्द्र! वर माग साँच्चै नै प्रसन्न भएको छु। कुमारको कुरा सुनेर सर्ववर्माले भन्न लागे ॥१९॥

सर्ववर्माले भने – हे देव! यदि मसँग खुसी हुनुहुन्छ भने सानो व्याकरण दिनुहोस्, जसद्वारा मदन पण्डित हुन सक्छन्। यस्तो तिनको कुरा सुनेर खूब पराक्रम भएका कुमारले कलाप नामको व्याकरण बनाएर सर्ववर्मा ब्राह्मणलाई दिए। सर्ववर्मा आचार्यले पनि त्यो पुस्तक लिएर मदन राजालाई यत्नपूर्वक पढाए र मदन पण्डित भए ॥२२॥ व्याकरणमा मदनको दृढ ज्ञान देखेर गुणाढ्य लज्जित भई सर्ववर्मालाई सर्वस्व दिएर र संस्कृत पनि छोडेर वनमा गए। गुणाढ्य पनि त्यहाँ खूब राम्रो आश्रम बनाएर विभूतिले सिंगारिएर जटाजूटले युक्त भई सधैं रुद्राक्षमालाले शिवको नाम जप गरिरहे ॥२०–२५॥

एक दिन तिनको आश्रममा दैवसंयोगले मुनिहरू वरिपरि लागेका पुलस्त्य मुनि आए ॥२६॥ श्रेष्ठ मुनि ती पुलस्त्य आएको देखेर गुण भएका गुणाढ्य आदरसाथ राखे। हे मुनि! आसनमा तिनलाई राखेर गुणाढ्यले पाद्यादिद्वारा पूजा गरे र नियत व्रत भएका मुनिहरूको पनि पूजा गरे। त्यसपछि थकाइ मारी बसेका र मुनिहरूसँगै भएका पुलस्त्यलाई नुहेका गुणाढ यले भाषामा सोधे ॥२६–२९॥

गुणाढ्यले भने – दयाका खानी हे श्रेष्ठ मुनि !मेरो सबै कथा हजूरले जान्नुभयो, मेरो निस्तार कसरी होला त्यो भन्नुहोस् ॥३०॥

मार्कण्डेयले भन्नुभयो – यस्तो तिनको कुरा सुनेर सर्वज्ञ मुनिसत्तम र ब्रह्माजीका छोरा पुलस्त्यले गुणाढ्यलाई फेरिभने ॥३१॥

पुलस्त्यले भने – हे ब्राह्मण! परम पीठ भएको मनोहर नेपालमा शिवलिङ्गमा स्थापना गरी पिशाच भाषाले नै लाख संख्याको गाथा बनाऊ, मोक्ष पाउनेछौ। हे श्रेष्ठ मुनि जैमिनि ! मुनिहरूले घेरिएका ब्रह्माका छोरा पुलस्त्य यति भनेर आफ्नो आश्रममा गए। त्यसपछि गुणवान् गुणाढ्यले मनोहर गाथा बनाई रुखका पातहरू लिएर धातुहरूद्वारा चाँडै नै लेखे र आफैं गाथा पढे पनि। गुणाढ्यले बनाएको गाथा सुनेर खान नै छोडी सधैं पशुहरू आश्रममा बसे। हे मुनि! गुणीहरूमा श्रेष्ठ गुणाढ्य जब जप गर्थे अनि सबै पशुहरू घाँस खोज्न लागेका हुन्थे। हे मुनि! मदन राजाका व्याधाहरूले ती मृगहरूलाई मारेर भान्छेहरूलाई दिए, तिनीहरूले पनि पकाए। एकदम नरीसमासु खाएर राजाले भान्छेलाई भन्न लागे ।३२–३७½॥

राजाले भने – हे भान्छेहरू! किन मलाई सुकेको मासु दियौ हैं ? तिनको यस्तो कुरा सुनेर भान्छेहरूले राजालाई भने व्याधाहरूले ल्याएको मासु हामीहरूले संस्कार गर्‍यौं। भान्छेहरूको कुरा सुनेर राजाले व्याधाहरूलाई बोलाएर भने के कारणले सुकेको मासु आइपुग्यो हैं ? राजाको यस्तो कुरा सुनेर डराएका सिकारीहरूले भने – हे राजा! वनमा सबै मृगहरू दुब्ला भए। कसरी मृगहरू दुब्ला भए, त्यो कारण त थाहा छैन। सिकारीहरूको कुरो सुनेर राजाले सिकारीहरूलाई भने – हे सिकारी हो! कसरी ती मृगहरू दुब्ला भए, त्यो कारण थाहा पाओ। राजाको यस्तो कुरा सुनेर शिकारीहरू वनमा गए। त्यो राम्रो आश्रममा गएर अनि गाथा बनाएर भन्ने लट्टा परेको जुँगा भएका गुणाढ्यलाई देखे। हे मुनि !गाथा सुनेर बसेका पशुहरूलाई देखे अनि त तिनीहरू पनि त्यहीं वनमा गाथा सुनेर बसे। राजाले मासु नभएको भोजन गरे रीसले रातो आँखा भएका भान्छेहरूलाई सोधे ॥३८–४७॥

राजाले भने – किन आज मासु नभएको खाना ल्यायौ ? राजाको यस्तो रीसाहा कुरो सुनेर हात जोडेका भान्छेहरूले राजालाई भने ॥४८॥

भान्छेहरूले भने – हे राजा ! मासुका लागि जुन सिकारीहरू वनमा जान्छन्, ती यमलोकमा गएझैं फर्कंदै फर्कंदैनन् ॥४९॥

तिनीहरूको यस्तो कुरा सुनेर बुद्धिमान्हरूमा श्रेष्ठ राजा सर्ववर्मा आचार्यका साथ वनमा गए। ती राजाले गुणीहरूमा श्रेष्ठ धीर र अनेकौं आश्चर्यले युक्त अनौंठा कथाहरू भन्ने गुणाढ्यलाई देखे। त्यो कथा सुन्ने रमाइलोले गर्दा घाँसै छोडेका दुब्ला मेद र मासु नभएका पशुहरूलाई पनि राजाले देखे। आफ्नो पनि रस उत्पन्न भएको जानेर राजाले गुणीहरूमा श्रेष्ठ र धर्ममा लागेका गुणाढ्यको वन्दना गरे। अनि धीर गुणाढ्यले पनि सर्ववर्मा आएको देखेर गुरुलाई झैं नमस्कार गरेर राजालाई आशिष दिए। ती ब्राह्मण सर्ववर्मा र राजाको विधिवत् पूजा गरे। सर्ववर्माको मतमा लागेका राजाले भने हे गुणाढ्य! शहर जाऔं र पहिल्यैको झैं नै गरी बस्नुहोस् ॥५०-५६॥

राजाले यति भनिसकेपछि गुणाढ्यले राजालाई भने राजा सबै जानें पैशाची भाषामा नौ लाख राम्रा गाथाहरूबनाएँ राजा तिनलाई तपाईं संस्कृतमा लेखाउनुहोस्। म क्षेत्रहरूमा पनि उत्तम क्षेत्र नेपाल जान्छु। हे जैमिनि ! यति भनेर ती गाथाहरू रुखका पातहरू दिए। तिनलाई लिएर राजा आफ्नो शहरमा गए। अनि त हे मुनि! गुणाढ्य पनि नेपालको श्लेष्मान्तक वनमा गए ॥५७-६०॥

स्कन्दपुराण अन्तर्गत हिमवतखण्डको नेपाल माहात्म्यमा अठ्ठाइसौं अध्याय सकियो।

# अथ ऊनत्रिंशोऽध्यायः

गुणाढ्यस्य नेपालयात्रा (गुणाढ्यको नेपालयात्रा)

जैमिनिरुवाच

नेपालक्षेत्रमासाद्य गुणाढ्येन महात्मना। किमकारि महाभाग तदाचक्ष्व पुरो मम ॥१॥

सूत उवाच

इति जैमिनिवाक्यान्ते मार्कण्डेयस्तपोधनः। गुणाढ्यचरितं सर्वं जैमिनिं प्राह शौनकः ॥२॥

मार्कण्डेय उवाच

नेपालक्षेत्रमासाद्य गुणाढ्यो द्विजसत्तमः। वाग्वत्याः सलिले स्नात्वा दृष्ट्वा पशुपतीश्वरम् ॥३॥
क्षेत्रप्रदक्षिणं कृत्वा लिङ्गं संस्थाप्य यत्नतः। आरुरोह ततो भृङ्गी कैलासं पर्वतोत्तमम् ॥४॥

जैमिनिरुवाच

भृङ्गिना मुनिशार्दूल कथं क्षेत्रप्रदक्षिणम्। कृतं तद्विधिमाचक्ष्व लिङ्गस्थापनकं विधिम् ॥५॥

मार्कण्डेय उवाच

क्षेत्रप्रदक्षिणविधिः श्रूयतां मुनिसत्तम। क्षेत्रप्रदक्षिणं कृत्वा नरः पापैः प्रमुच्यते ॥६॥
पूर्वेद्युर्मानवो यत्नाद्धविष्याशी जितेन्द्रियः। भूमिशायी ध्रुवं भूयाच्छिवस्मरणतत्परः ॥७॥
ततः प्रभाते वाग्वत्यां स्नानं कृत्वा यथाविधि। पूजयित्वा पशुपतिं सङ्कल्पं नियतश्चरेत् ॥८॥
मासपक्षतिथीनां च निमित्तानां च सर्वशः। आदावुल्लेखनं कृत्वा ततः सङ्कल्पमाचरेत् ॥९॥
क्षेत्रप्रदक्षिणं देव करिष्ये विधिपूर्वकम्। सङ्कल्पसिद्धिर्मे भूयात् त्वत्प्रसादान्महेश्वर ॥१०॥
अनुज्ञां देवदेवेश देहि मे परमेश्वर। इत्यनुज्ञां प्रार्थयित्वा त्रिः प्रदक्षिणमाचरेत् ॥११॥
ततो दक्षिणद्वारेण राजराजेश्वरीं व्रजेत्। विलोक्य भैरवं देवं वत्सलां प्रविलोक्य च ॥१२॥
गुह्येश्वरीं ततो गच्छेन्नदीमुत्तीर्य वाग्वतीम्। नत्वा गुह्येश्वरीं देवीं चैलगङ्गां ततो व्रजेत् ॥१३॥
स्नात्वा वै चैलगङ्गायां पितृन् सन्तर्प्य यत्नतः। गोकर्णेशं ततो गच्छेन्महापातकनाशनम् ॥१४॥
तमभ्यर्च्य महाभक्त्या यथाविभवविस्तरैः। तत्रानुज्ञां प्रार्थयित्वा गच्छेत् कारुणिकेश्वरम् ॥१५॥
सुन्दरीं च ततो दृष्ट्वा गच्छेद्वै वज्रयोगिनीम्। ततो गरुडपूर्वं हि नारायणमथो व्रजेत् ॥१६॥
सम्पूज्य तं यथाभक्ति गच्छेत् कीलेश्वरं प्रभुम्। ततो वागीश्वरं गच्छेद्वाग्विभूतिप्रदायकम् ॥१७॥

तत्र कुण्डे नरः स्नात्वा वाल्मीकीशं प्रपूजयेत्। तत्रैव वसतिं कुर्यादब्राह्मणान् भोजयेत् ततः ॥१८॥
रात्रौ जागरणं कुर्यान्नृत्यगीतादिकौतुकैः। ततः प्रभाते विमले स्नात्वा कुण्डे मनोहरे ॥१९॥
अनुज्ञां प्रार्थयेद्धीमान् कृताञ्जलिपुटस्तदा। जय वागीश्वर विभो जय त्र्यक्ष महेश्वर ॥२०॥
क्षेत्रप्रदक्षिणं कर्म निर्विघ्नं भवतु प्रभो। इत्यनुज्ञां प्रार्थयित्वा त्रिचम्पकसरो व्रजेत् ॥२१॥
देवान् पितॄंश्च सन्तर्प्य तस्मिंस्तीर्थे शुभोदके। भोगिभोगसमासीनं माधवं पूजयेज्जले ॥२२॥
ततश्चण्डेश्वरीं गच्छेन्महादुरितनाशिनीम्। चण्डेश्वरीं पूजयित्वा चण्डेश्वरसमन्विताम् ॥२३॥
गच्छेद्धनेश्वरं लिङ्गं धनवृद्धिकरं तदा। मौनी व्रजेत् ततो धीमान् लिङ्गं गोखुरकेश्वरम् ॥२४॥
अद्यापि दृश्यते लिङ्गं गोखुराङ्कसमं मुने। तमभ्यर्च्य ततो गच्छेल्लिङ्गमिन्द्रेश्वराभिधम् ॥२५॥
लीलावत्या रुद्रमत्या सङ्गमे सुमनोहरे। स्नात्वा पितॄन् समभ्यर्च्य दत्वा दानानि शक्तितः ॥२६॥
अर्चयित्वेश्वरं लिङ्गमाशापूरेश्वरं व्रजेत्। तं समभ्यर्च्य विधिवड्डोलोलेश्वरमथो व्रजेत् ॥२७॥
तत्रैव वसतिं कुर्याद्धारातीर्थेऽतिपुण्यदे। रात्रित्रये नृत्यगीतपुराणश्रवणैर्नरः ॥२८॥
प्रातः स्नात्वा समभ्यर्च्य डोलेश्वरमिति क्रमात्। अनुज्ञां प्रार्थयेत् तत्र भक्तियुक्तो नरोत्तमः ॥२९॥
जय डोलेश्वर विभो क्षेत्रवासिजनप्रिय। अनुज्ञां देहि देवेश प्रदक्षिणविधौ मम ॥३०॥
इत्यनुज्ञां गृहीत्वा तु गच्छेत् सूर्यविनायकम्। गणेश विघ्नहरण भक्तानुग्रहकारक ॥३१॥
क्षेत्रप्रदक्षिणविधिमविघ्नं कुरु मे प्रभो। इति मन्त्रेण गणपं नत्वा भक्तिपुरःसरम् ॥३२॥
अनन्तलिङ्गं नियमादगच्छेद्धर्मार्थकामदम्। तत्र पुष्करिणीं प्राप्य देवाग्रे निर्मलोदकाम् ॥३३॥
स्नात्वा यथाविधि जले पितॄन् सन्तर्प्य यत्नतः। तल्लिङ्गं पूजयित्वा तु यथाविभवविस्तरैः ॥३४॥
दानानि च यथाशक्त्या शिवप्रीत्या उदारधीः। द्विजातिभ्यस्ततो दद्यात् सात्त्विको यतमानसः ॥३५॥
गच्छेद्वै वज्रवाराहीं सर्वदेवनमस्कृताम्। भक्त्या देवीं नमस्कृत्य भारभूतेश्वरं व्रजेत् ॥३६॥
भुजङ्गशैलमारुह्य गुहाद्वारि मनोहरे। क्षेत्रसीमानिवसतिं गणेशं द्वारि पूजयेत् ॥३७॥
योन्याकारेण च्छिद्रेण प्रविश्य मनुजः सुधीः। भारभूतेश्वरं नत्वा सर्वपापैः प्रमुच्यते ॥३८॥
योन्याकारेण च्छिद्रेण यः प्रविश्य नरः सुधीः। भारभूतेश्वरं पश्यन् न स गर्भगृहं विशेत् ॥३९॥
मनःशिलामहातीर्थे दृष्ट्वा हरिहरावुभौ। भैरवं च नरो दृष्ट्वा सर्वपापैः प्रमुच्यते ॥४०॥
पथा तेन परावृत्य मातृतीर्थं ततो व्रजेत्। अद्यापि तत्र वर्तन्ते जैमिने मुनिसत्तम ॥४१॥
मीनाः सुवर्णतिलका मातृतीर्थे मनोहरे। मातृतीर्थे नरः स्नात्वा दृष्ट्वा हरिहरावुभौ ॥४२॥
न स गर्भगृहं याति पुमान् स्त्री वा न संशय। हरसिद्धिमथो दृष्ट्वा गोपालेशं ततो व्रजेत् ॥४३॥
गोपालेशं पूजयित्वा दृष्ट्वा नारायणं प्रभुम्। तत्रैव जागरणं कुर्याद्गीतनृत्यसुमङ्गलैः।
ततः प्रभाते विमले स्नात्वा चैव यथाविधि ॥४५॥
अनुज्ञां प्रार्थयेद्धीमान् गोपालेश्वरसन्निधौ। गोपालेश महादेव क्षेत्रविघ्ननिवारक ॥४६॥
क्षेत्रप्रदक्षिणविधिर्भवतु त्वत्प्रसादतः। इत्याज्ञां प्राप्य मनुजो गच्छेद्वै पाण्डुकेश्वरम् ॥४७॥
पाण्डुनद्यां नरः स्नात्वा दृष्ट्वा वै पाण्डुकेश्वरम्। अपि दुष्कृतकर्माऽपि मुच्यते सर्वकिल्विषात् ॥४८॥
ततः पर्वतमुल्लङ्घ्य चतुर्वक्त्रेश्वरं व्रजेत्। चतुर्वक्त्रेश्वरं भक्त्या पूजयित्वा यथाविधि ॥४९॥
इन्द्रेश्वरमथो गच्छेत् सर्वसिद्धिप्रदायकम्। तं पूजयित्वा विधिवन्महाविभवविस्तरैः ॥५०॥
ततः पर्वतमुल्लङ्घ्य प्रत्यङ्नारायणं व्रजेत्। नारायणं पूजयित्वा तत्रैव वसतिं चरेत् ॥५१॥
रात्रौ जागरणं कुर्याद्विष्णुधर्मकथादिभिः। ततः प्रभाते विमले स्नानं कृत्वा यथाविधिः ॥५२॥
अनुज्ञां प्रार्थयेत् तत्र श्रीनारायणसन्निधौ। मह्यं देहि प्रभोऽनुज्ञां विष्णो त्रैलोक्यपूजित ॥५३॥
क्षेत्रप्रदक्षिणविधिः पूर्णोऽस्तु कृपया तव। इत्यनुज्ञां ततो लब्ध्वा बुद्धस्थानं ततो व्रजेत् ॥५४॥
परमानन्दकन्दाब्जे धर्मधातुद्रवे जले। गयातीर्थात् समागत्य बुद्धो देवः स्वयं स्थितः ॥५५॥
वसन्ति भिक्षवो यत्र विहाय सुतबान्धवान्। ज्ञानानन्दसमायुक्ता बुद्धदर्शनलालसाः ॥५६॥
बुद्धं प्रदक्षिणीकृत्य ततो विष्णुमतीं व्रजेत्। विष्णुमत्यां नरः स्नात्वा सन्तर्प्य च पितामहान् ॥५७॥

लुण्ठिकेशं ततो गच्छेद्यत्रास्ते भगवान् हरिः। अनन्तशयनासीनं वीक्ष्य नारायणं नरः ॥५८॥
उत्तरेण ततो गच्छेद्विष्णुस्मरणतत्परः। अधस्तात् पर्वतस्यैव भोगिभोगासनस्थितम् ॥५९॥
नरो नारायणं दृष्ट्वा मुच्यते चापि किल्विषात्। आगच्छेद्दक्षिणपथा जयवागीश्वरीं शिवाम् ॥६०॥
तामभ्यर्च्य यथाशक्त्या दण्डवत् प्रणिपत्य च। मनसा संस्मरन् विष्णुं गच्छेत् पशुपतीश्वरम् ॥६१॥
दृष्ट्वा पशुपतिं देवं सर्वपापैः प्रमुच्यते। पञ्चामृतैः पञ्चगव्यैः स्नापयेत् परमेश्वरम् ॥६२॥
नानासुगन्धिद्रव्यैश्च सुगन्धिकुसुमैस्तथा। अभ्यर्चयेद्यथाशक्ति धूपैर्नैवेद्यविस्तरैः ॥६३॥
ब्राह्मणान् भोजयेच्छक्त्या दद्याच्चापि च दक्षिणाम्। कृताञ्जलिपुटो भूत्वा मन्त्रं चेमं ततः पठेत् ॥६४॥
देवदेव महादेव पार्वतीप्राणवल्लभ। क्षेत्रप्रदक्षिणविधिः सम्पूर्णस्त्वत्प्रसादतः ॥६५॥
इमं मन्त्रं समुच्चार्य वाग्वतीसरितं व्रजेत्। तत्र स्नात्वा यथान्यायं सन्तर्प्य च पितामहान् ॥६६॥
विलोक्य वत्सलां देवीं गच्छेद्द्वारं च दक्षिणम्। देवं प्रदक्षिणीकृत्य वासुकिं प्रविलोक्य च ॥६७॥
प्राच्यां दिशि ततो दृष्ट्वा द्वारपालविनायकम्। ततः कृतार्थो भवनं गच्छेन्मनुजसत्तमः।
सुहृद्भिः सह भुञ्जीत पापशून्यो नरोत्तमः ॥६८॥

इति श्रीस्कन्दपुराणे हिमवतखण्डे नेपालमाहात्म्ये ऊनत्रिंशोऽध्यायः ॥२९॥

---

जैमिनिले भने – नेपालक्षेत्रमा पुगेर गुणाढ्य महात्माले के गरे ? हे महाभाग! मेरा अगाडि त्यो भन्नुहोस् ॥१॥

सूतले भने – हे शौनक! जैमिनिले यति भनेपछि तपोधन मार्कण्डेयले जैमिनिलाई गुणाढ्यको सबै कथा भन्नुभयो ॥२॥

मार्कण्डेयले भन्नुभयो – श्रेष्ठ ब्राह्मण !गुणाढ्य नेपालक्षेत्रमा पुगी वाग्वतीको जलमा नुहाएर पशुपतिलाई हेरीवरी क्षेत्रको प्रदक्षिणा गरेर यत्नपूर्वक लिङ्गस्थापना गरेपछि उत्तम पर्वत कैलासमा भृङ्गी अर्थात् गुणाढ्यले आरोहण गरे ॥३–४॥

जैमिनिले भने – हे श्रेष्ठ मुनि! भृङ्गीले कसरी क्षेत्रप्रदक्षिणा गरे त्यो विधि र लिङ्गस्थापनाको विधि भन्नुहोस् ॥५॥

मार्कण्डेयले भन्नुभयो – हे मुनि! क्षेत्रप्रदक्षिणाको विधि सुन्नुहोस्। क्षेत्रप्रदक्षिणा गरेर मानिस पापबाट छुट्छ। क्षेत्रप्रदक्षिणा गर्ने मानिसले अघिल्लो दिन यत्नपूर्वक हविष्य खानुपर्छ, इन्द्रियविजयी हुनुपर्छ, भूमिशयन गर्नुपर्छ र भगवान् शिवको स्मरण गर्नुपर्छ ॥७॥ बिहान विधिपूर्वक वाग्वतीमा नुहाएर पशुपतिको पूजा गरी निश्चित सङ्कल्प गरोस्। पहिल्यै महिना पक्ष तिथिको र सबै निमित्तहरूको पनि उल्लेख गरेर सङ्कल्प गरोस्। देव विधिपूर्वक क्षेत्रको प्रदक्षिणा गर्छु। हे महेश्वर ! तपाईंको प्रसादबाट मेरो सङ्कल्प सिद्धि होस्। हे परमेश्वर ! देवताका पनि देव !मलाई आज्ञा दिनुहोस्। यस्तो आज्ञा मागेर तीन पटक प्रदक्षिणा गरोस् ॥६–११॥

अनि दक्षिण ढोकाबाट राजराजेश्वरीमा गई भैरव र वत्सलाको दर्शन गरेर ओर्लिई वाग्वतीमा जानुपर्दछ। गुह्येश्वरीदेवीलाई नमस्कार गरेपछि चैलगङ्गा जानुपर्दछ। चैलगङ्गामा नुहाएर यत्नपूर्वक पितृहरूलाई तर्पण दिई त्यसपछि महापाप नाश गर्ने गोकर्णेश जानुपर्दछ। सरसामानसहित तिनलाई ठूलो भक्तिसाथ पूजा गरेर त्यहाँ आज्ञा मागी कारुणिकेश्वर जाओस्। त्यसपछि सुन्दरीको दर्शन गरेर वज्रयोगिनीमा जानुपर्दछ र त्यसपछिगरुडनारायणमा जानुपर्दछ। तिनलाई भक्तिपूर्वक पूजा गरी कीलेश्वरमा जानुपर्दछ अनि वाग्विभूति दिने वागीश्वरमा जानुपर्दछ। त्यस कुण्डमा नुहाएर मानिसले वाल्मीकेशको पूजा गर्नुपर्दछ र त्यहीं बसेर ब्राह्मणहरूलाई भोजन गराउनुपर्दछ। अनि राति रमाइला नाचगान र बजानले जागरण गर्नुपर्दछ। बिहान निर्मल र सुन्दर कुण्डमा नुहाएर हात जोरेको बुद्धिमान्ले प्रार्थना गर्नुपर्दछ – जय वागीश्वर प्रभु ! जय तीन आँखा भएका महेश्वर प्रभु! क्षेत्रप्रदक्षिणा गर्ने काम विघ्नरहित होस्, यस्तो आज्ञा प्रार्थना गरेर त्रिचम्पक तलाउमा जानुपर्दछ ॥१२–२१॥

त्यस शुभ तीर्थमा देवता र पितृहरूलाई तर्पण दिएर शेषशायी नारायणको पूजा गर्नुपर्दछ। त्यसपछि महापाप नाश गर्ने चण्डेश्वरीमा गई चण्डेश्वरसहितकी चण्डेश्वरीलाई पूजा गरेर धन बढाउने धनेश्वर लिङ्गमा जानुपर्दछ। त्यसपछि मौन रहेको बुद्धिमान् भक्त गोखुरकेश्वर लिङ्गमा जाओस्। हे मुनि ! गाईको खुरजस्तो लिङ्ग आजभोलि पनि देखिन्छ। त्यसको पूजा गरेपछि इन्द्रेश्वर लिङ्गमा जाओस्। लीलावती र रोषमतीको मनोहर दोभानमा नुहाएर पितृहरूको पूजा गरी शक्तिअनुसार दान दिएर ईश्वरको पूजा गरी आशापूरेश्वर लिङ्गमा जाओस्। विधिपूर्वक त्यसमा पूजा गरी डोलेश्वर जाओस्। तीन रातसम्म मानिस नाच, गान र पुराण सुनेर ज्यादै पुण्य दिने त्यहीं नै धारातीर्थमा वास बसोस् ॥२२–२८॥

बिहान नुहाएर क्रमैले डोलेश्वरको पूजा गरी भक्ति भएको मानिसले आज्ञा मागोस्। क्षेत्रमा बस्ने मानिसका प्यारा हे डोलेश्वर विभु !जय होस्, प्रदक्षिणा गर्न मलाई आज्ञा दिनुहोस्। यस्तो आज्ञा लिएर सूर्यविनायकमा जाओस्, 'विघ्न हटाइदिनुहोस्' भन्ने मन्त्रले भक्तिपूर्वक गणेशलाई नमस्कार गरेर धर्म, अर्थ, काम दिने अनन्तलिङ्गमा नियमपूर्वक जाओस्।

निर्मल जल भएको पोखरीमा पुगेर पितृहरूलाई तर्पण दिएर सरसामानसहित त्यस लिङ्गको पूजा गरी उदार चित्त भएको, मन ठीक भएको सात्विकले शिवको प्रेमले गच्छे अनुसार द्विजातिहरूलाई दान दिएपछि। सबै देवताले नमस्कार गरिएकी वज्रवाराहीमा गएर भक्तिपूर्वक देवीलाई नमस्कार गरी भारभूतेश्वरमा जानुपर्दछ॥२९-३६॥

भुजङ्गपर्वत चढेर मनोहर गुहाद्वारको सीमामै रहेका गणेशको ढोकामा नै पूजा गर्नुपर्दछ। बुद्धिमान् मानिस योनिको आकारको प्वालबाट पसी भारभूतेश्वरलाई नमस्कार गरेर सम्पूर्ण पापबाट छुट्दछ। जुन बुद्धिमान् मानिसले योनिको आकार भएको प्वालबाट पसी भारभूतेश्वरलाई दर्शन गर्छ, त्यो गर्भमा पस्नेछैन। मनः शिला महातीर्थमा डुबे हर, हरि र भैरवलाई पनि हेरेपछि मानिस सम्पूर्ण पापबाट छुट्दछ। हे असल मुनि जैमिनि ! त्यसपछि त्यसै बाटेद्वारा फर्केर मातृतीर्थमा जाओस्। मनोहर मातृतीर्थमा आज पनि सुनटीके माछाहरू छन्। मानिसले मातृतीर्थमा नुहाएर हरि र हर दुबैको दर्शन गरेपछि पुरुष होस् वा स्त्री त्यो निश्चय नै पाठेघरमा पस्दैन। अनि हरसिद्धिको दर्शन गरेर गोपालेश्वरमा जानुपर्दछ। गोपालेश्वरको पूजा गरेर नारायणको दर्शन गरी हविष्य खाएको र इन्द्रिय जितेको मानिस त्यहीँ बसोस्। मङ्गलमय नाच र गानका साथ राती जाग्राम गरोस्। त्यसपछि स्वच्छ बिहानको उदय भएपछि विधिपूर्वक नुहाएर गोपालेश्वरको नजिकमा गई बुद्धिमान्ले आज्ञा मागोस्। क्षेत्र क्षेत्रको विघ्न हटाउने हे गोपालेश्वर महादेव !तपाईंको प्रसादबाट प्रदक्षिणा गर्ने विधि पूर्ण होस् भनी उहाँको आज्ञा पाएर मानिस पाण्डुकेश्वर जाओस्॥३७-४७॥

पाण्डु नदीमा नुहाएर पाण्डुकेश्वरको दर्शन गरेपछि दुष्कृत कर्म गर्ने मानिस पनि सम्पूर्ण पापबाट छुट्दछ॥४८॥ त्यसपछि पर्वत नाघेर चतुर्वक्त्रेश्वरमा जानुपर्दछ। भक्तिले विधिपूर्वक चतुर्वक्त्रेश्वरको पूजा गरेर सबै सिद्धि दिने इन्द्रेश्वरमा जानुपर्दछ। सरसामानका साथ विधिपूर्वक तिनको पूजा गरेर पर्वत नाघी पश्चिमपट्टि नारायणको दर्शनार्थ जाओस्, नारायणको पूजा गरी त्यहीँ वास बसोस्॥४९-५१॥ राति विष्णु र धर्मका कथाहरू गरी जाग्राम गरोस्। स्वच्छ बिहान भएपछि विधिपूर्वक नुहाई श्रीनारायणको नजिक आज्ञा मागोस्। तीनै लोकले पूजिएका हे विष्णु प्रभु! मलाई आज्ञा दिनुहोस्। तपाईंको आज्ञाले क्षेत्रप्रदक्षिणा गर्ने विधि पूर्ण होस्। यस्तो आज्ञा पाएर बुद्धस्थानमा जानुपर्दछ॥४८-५४॥

परमानन्दको कन्दको कमलमा धर्मधातुको द्रवरूप जलमा महाचीनबाट बुद्धदेव स्वयं आएर बसे। जहाँ ज्ञानानन्दले युक्त र बुद्धदर्शन मन पराउने वा बुद्धलाई दर्शन गर्न खोज्ने भिक्षुहरू छोरा र दाजुभाइलाई छोडेर बस्छन्। त्यहाँ गएर बुद्धलाई प्रदक्षिणा गरेपछि विष्णुमतीमा जाओस्। मानिसले विष्णुमतीमा नुहाएर जिजुबाजेलाई तर्पण दिई लुण्ठिकेश जाओस्। जहाँ भगवान् हरि रहनुहुन्छ। अनन्तशयनमा रहेका नारायणलाई हेरेर विष्णुलाई सम्झिरहने मानिस उत्तरतिर लाग्नुपर्दछ। पर्वतको तल नागको आसनमा रहेका नारायणलाई हेरेर मानिस सबै पापबाट छुट्दछ। दक्षिणतिरको बाटे गरेर जयवागीश्वरी शिवाकहाँ जाओस्। गच्छेअनुसार तिनको पूजा गरेर दण्डवत् प्रणाम गरी मनले विष्णुलाई सम्झँदै पशुपति ईश्वरकहाँ जाओस्॥५५-६१॥

पशुपतिदेवको दर्शन गरेर सम्पूर्ण पापबाट छुट्दछ। पञ्चामृत र पञ्चगव्यल परमेश्वरलाई नुहाओस्। विभिन्न सुगन्धी चीजबीजले बास्ना आउने फूलहरूले र धूप नैवेद्यहरूले गच्छेअनुसार पूजा गरोस्। शक्ति अनुसार ब्राह्मणहरूलाई भोजन गराओस् र दक्षिणा पनि देओस् अनि हात जोडेर यो मन्त्र पढोस् – 'देवताका पनि देव हे महादेव! हे पार्वतीका प्राणप्यारा !तपाईंको प्रसादबाट क्षेत्रप्रदक्षिणा गर्ने विधि पूर्ण भयो'। यो मन्त्र भनेर वाग्वती नदीमा जाओस्। त्यहाँ विधिपूर्वक नुहाएर पितामहहरूलाई तर्पण दिई वत्सला देवीको दर्शन गरी पछि दक्षिणढोकामा जाओस्। पशुपतिदेवको प्रदक्षिणा गरी वासुकिलाई पनि हेरी पूर्वपट्टिका द्वारपाल विनायकको पनि दर्शन गरी कृतार्थ भएको श्रेष्ठ मानिस घर जाओस्। पाप हुँदै नभएको त्यो उत्तम मान्छेले मित्रजनहरूका साथ भोजन गर्नुपर्दछ॥६२-६८॥

स्कन्दपुराण अन्तर्गत हिमवतखण्डमा नेपालमाहात्म्यको उनन्तीसौँ अध्याय सकियो।

# अथ त्रिंशोऽध्यायः

भृङ्गीश्वरशिवलिङ्गमहिमा

(भृङ्गीश्वर शिवलिङ्गको महिमा)

जैमिनिरुवाच

भवदुक्तप्रकारेण कृत्वा क्षेत्रप्रदक्षिणम्। कथं संस्थापितं लिङ्गं भृङ्गिणा तदब्रवीहि मे॥१॥

मार्कण्डेय उवाच

क्षेत्रप्रदक्षिणं कृत्वा गुणाढ्यो गुणिनां वरः। आहूय च मुनीन् सर्वान् नेपालक्षेत्रवासिनः॥२॥

गुह्येश्वरीसन्निधिस्थान् वत्सलापार्श्वसंस्थितान्। शङ्खमूले स्थितांश्चापि कुम्भेशसविधे स्थितान्॥३॥

स्थितान् पशुपतेः पार्श्वे तथा दोलागिरिस्थितान्। हनुमत्तीर्थसंस्थाँश्च तथा वागीश्वरस्थितान् ॥४॥
चण्डेश्वरीसन्निधिस्थान् वज्रासन्निधिवासिनः। मृगेन्द्रशिखरस्थाँश्च विष्णुमत्युद्भवस्थितान् ॥५॥
आशापूरेश्वरस्थाँश्च डोलेश्वरनिवासिनः। भारभूतेश्वरस्थाँश्च गोपालेश्वरसंस्थितान् ॥६॥
इत्यादिनानातीर्थस्थांस्तापसान् विजितेन्द्रियान्। तेषां सम्मतिमादाय वेदोक्तविधिना तदा ॥७॥
लिङ्गसंस्थापनं कर्म प्रारेभे होमपूर्वकम्। ततः प्रववृते यज्ञो गुणाढ्यस्य महात्मनः ॥८॥
दीयतां भुज्यतां चैव जातो हि निनदो महान्। मरुत्तस्य यथा यज्ञो यथा दाशरथेरपि ॥९॥
तथैव यज्ञो ववृधे गुणाढ्यस्य महात्मनः। होमान्ते स्थापयामास शिवलिङ्गं द्विजोत्तमः ॥१०॥
कृताञ्जलिपुटो भूत्वा गुणाढ्यो गुणिनां वरः। प्रोवाच तापसान् सर्वान् विनयानतकन्धरः ॥११॥

गुणाढ्य उवाच

शृण्वन्तु ब्राह्मणाः सर्वे शिवलिङ्गस्य तापसाः। किं नामधेयं कर्तव्यं तत् समाख्यातुमर्हथ ॥१२॥
गुणाढ्यवचनं श्रुत्वा मुनीनामग्रतस्तथा। हारीतो नाम विप्रर्षिर्गुणाढ्यं प्राह धार्मिकम् ॥१३॥

हारीत उवाच

गुणाढ्य श्रूयतां वाक्यं न त्वं प्राकृतमानुषः। हेतुना केन चिच्छिप्तः शम्भुना पूर्वजन्मनि ॥१४॥
भृङ्गी ते नाम शम्भोस्त्वं सर्वदा द्वारपालकः। अतो भृङ्गीश्वरं नाम कुरु लिङ्गस्य सर्वथा ॥१५॥

मार्कण्डेय उवाच

हारीतस्य वचः श्रुत्वा प्राच वेदशिरा मुनिः। इति भृङ्गीश्वरं लिङ्गं वदन्तु द्वापरे युगे ॥१६॥

वेदशिरा उवाच

स्पर्शपाषाणजं लिङ्गं यतो भृङ्गीश्वराभिधम्। अतः कलियुगे लोकाः सुवर्णेश्वरसंज्ञितम् ॥१७॥
वदिष्यन्ति मुनिश्रेष्ठाः सर्वकामप्रदं सदा।

मार्कण्डेय उवाच

ततो गुणाढ्यो गुणवान् रत्नगोवस्त्रकाञ्चनैः ॥१८॥
ब्राह्मणाँस्तोषयामास गुणश्रेष्ठपुरस्सरम्। ततः पपात गगनात् पुष्पवृष्टिर्मनोहरा ॥१९॥
देवदुन्दुभयो नेदुर्ननृतुश्चाप्सरोगणाः। ववौ वायुः सुखस्पर्शो गन्धर्वा ललितं जगुः ॥२०॥
मुनीनां पश्यतां तत्र वृषयानं मनोहरम्। विमानमागतं तत्र नानाश्चर्यसमन्वितम् ॥२१॥
रुद्ररूपधरैः श्रेष्ठैर्गणैश्च समधिष्ठितम्। तदाश्चर्यं महद्दृष्ट्वा सर्वे सम्भ्रान्तमानसाः ॥२२॥
उत्तस्थुर्मुनयः सर्वे वेदवेदाङ्गपारगाः। अवतीर्य विमानात् तु ततो रुद्रगणा मुने ॥२३॥
प्रोचुर्मुनिगणान् हर्षाद्भस्मरुद्राक्षधारिणः। त्रिशूलधारिणो गौरा जटामुकुटधारिणः ॥२४॥

रुद्रगणा ऊचुः

लोचनत्रयसंयुक्ता दिव्या डमरूपाणयः। भवन्तो मुनयः सर्वे वेदवेदाङ्गपारगाः ॥२५॥
आसनेषु समासीनाः शृणुध्वं वचनं मम। एवं गणवचः श्रुत्वा हारीतः प्राह तान् गणान् ॥२६॥

हारीत उवाच

रुद्ररूपधराः सर्वे तेजसा भास्करोपमाः। उपविश्य भवन्तोऽपि कथा कुर्वन्तु सर्वथा ॥२७॥

मार्कण्डेय उवाच

उपविश्य गणाः सर्वे कथाः प्रोचुर्मनोहराः।

रुद्रगणा ऊचुः

यो देवः सर्वदेवानां देवेषु परिगीयते ॥२८॥
येन सृष्टं जगत् सर्वं यः पाति सकलं जगत्। संहरत्यपि भूतानि स देवः परमेश्वरः ॥२९॥
वेदा अपि न जानन्ति यं रुद्रं परमार्थतः। इह नैको गुणान् वक्तुं तस्य सर्वात्मनो विभोः ॥३०॥
परमात्मस्वरूपेण वर्तते सर्वजन्तुषु। नित्यानन्दमयः साक्षात् स देवः केवलो विभुः ॥३१॥
निर्गुणो देहवान् योऽपि सर्वगो न हि गोचरः। यस्यान्तं नैव जानाति ब्रह्मा हरिरपि स्वयम् ॥३२॥
स देवैश्चिन्त्यते साक्षात् सर्वव्यापी महेश्वरः। कृपया यस्य देवस्य वासवाद्याः सुरा अपि ॥३३॥
सम्प्राप्ता लोकपालत्वं स देवो गिरिजापतिः। श्मशाने वसतिर्यस्य ललाटे यस्य चन्द्रमाः ॥३४॥

वामाङ्गे गिरिजा यस्य स यदाह शृणुष्व तत्। अपि दुष्कृतकर्माऽपि यो लिङ्गं स्थापयेन्नरः ॥३५॥
मुच्यते सर्वपापेभ्यो नात्र कार्या विचारणा। हेलया कपटेनापि शोभया मनुजोत्तमः ॥३६॥
धारयन्ति च रुद्राक्षं तेषां पापं न विद्यते। विभूतिभूषिता ये वै ये च रुद्राक्षधारिणः ॥३७॥
लिङ्गसंस्थापका ये च ते स्युः कैलासवासिनः। मल्लिङ्गपूजनरता मन्नामग्रहणे रताः ॥३८॥
मत्पुष्पवाटीकर्तारस्ते स्युः कैलासवासिनः। अर्कधत्तूरपुष्पैश्च विल्वपुष्पैस्तथा जलैः ॥३९॥
मां पूजयन्ति मनुजास्ते स्युः कैलासवासिनः। अपि दुष्कृतकर्माऽपि युक्तो वा सर्वपातकैः ॥४०॥
लिङ्गसंस्थापनादेव मुच्यते नात्र संशयः। हेलया परिहासेन सङ्केतेनापि मानवाः ॥४१॥
मन्नामग्रहणे युक्ता मुच्यन्ते घोरकिल्विषात्। अयं तु गुणवाँल्लोके गुणाढ्यो लोकपूजितः ॥४२॥
आचारवान् योगयुक्तो वेदवेदाङ्गपारगः। विद्यावान् विनयाधारः स्वाध्यायी देवपूजकः ॥४३॥
विशेषतो हि मद्भक्तो मन्नामग्रहणे रतः। अस्य प्राक्तनकं जन्म शृण्वन्तु मुनयो ध्रुवम् ॥४४॥
अयं किल पुरा भृङ्गी नन्दितुल्यो महाबलः। मद्वारपालको नित्यं मम रूपधरः सदा ॥४५॥
एकस्मिन् दिवसे देव्या मया च रहसि स्थितम्। कुर्वतो हि कथास्तत्र नानारससमन्विताः ॥४६॥
तत्रानेन समास्थाय भृङ्गरूपं हि दुर्धिया। आगत्य हि श्रुताः सर्वाः कथा मन्मुखनिर्गताः ॥४७॥
कथास्ताः कथयामास स्वपत्न्यै रससंयुताः। एतज्ज्ञात्वा मया शप्तः कैलासात् पतितो ह्ययम् ॥४८॥
तत् तस्य चरितं सर्वं ज्ञात्वाऽन्तर्यामिना तदा। शप्तोऽसौ देवदेवेन ततो मानुषतामियात् ॥४९॥
लब्ध्वा विप्रकुले जन्म गुणाढ्यो गुणिनां वरः। नवलक्षमिता गाथाः कृत्वा रससमन्विताः ॥५०॥
नेपाले परमे क्षेत्रे देवानामपि दुर्लभे। लिङ्गं संस्थापयामास शिवस्यानुग्रहोऽभवत् ॥५१॥
विमानं प्रेषितं दिव्यं देवदेवेन शम्भुना। एहि विप्र गुणाढ्य त्वं विमानेऽधिष्ठितो भव ॥५२॥

मार्कण्डेय उवाच

सहैव यामः कैलासं शम्भुमद्य प्रपश्यसि। एवं गणवचः श्रुत्वा गुणाढ्यो गुणिसत्तम ॥५३॥
वदनं समुदैक्षेत मुनीनामुग्रतेजसाम्। ततो गुणाढ्यमालोक्य मुनीनां मुखवीक्षकम् ॥५४॥
प्राह चण्डतपा वाक्यं मुनीनां तत्र शृण्वताम्।

चण्डतपा उवाच

आदावेव हि सम्प्रोक्तं हारीतेन तपस्विना ॥५५॥
सेवको देवदेवस्य न त्वं प्राकृतमानुषः। नेपाले परमे क्षेत्रे लिङ्गं संस्थापितं त्वया ॥५६॥
शापान्तस्तेन ते जातस्तुष्टोऽभूत् पार्वतीपतिः। विमानवरमारुह्य याहि पश्य महेश्वरम् ॥५७॥

मार्कण्डेय उवाच

आशीर्वादैर्द्विजादीनां शीघ्रं पश्य महेश्वरम्। इति श्रुत्वामुनेर्वाक्यं गुणाढ्यो द्विजसत्तमान् ॥५८॥
आमन्त्र्याधिरुरोहाशु विमानमतिसुन्दरम्। जयध्वनिस्ततो जातो मुनीनां वदनोद्गतः ॥५९॥
पपात खात् पुष्पवृष्टिर्विद्याधरकरच्युता। देवदुन्दुभयो नेर्दुननृतुश्चाप्सरोगणाः ॥६०॥
ववौ वायुः सुखस्पर्शो गन्धर्वा ललितं जगुः। विमानस्पर्शमात्रेण गुणाढ्यो गुणिनां वरः ॥६१॥
त्र्यक्षरूपधरो भूत्वा कैलासं प्रययौ तदा। एवं ते कथितं विप्र भृङ्गीश्वरसमुद्भवम् ॥६२॥
भृङ्गीश्वरसमं लिङ्गं न भूतं न भविष्यति। भृङ्गीश्वरं ये पश्यन्ति नेपाले क्षेत्रसत्तमे ॥६३॥
तेषां मनोरथावाप्तिर्भविष्यति न संशयः। भृङ्गीश्वरं ये पश्यन्ति भक्तियुक्तेन चेतसा ॥६४॥
तेषां दास्यति कैलासं भगवान् पार्वतीपतिः। अष्टम्यां च चतुर्दश्यां सङ्क्रान्तिदिवसे तथा ॥६५॥
भृङ्गीश्वरं ये द्रक्ष्यन्ति ते यास्यन्ति परां गतिम्। षण्मासं प्रत्यहं दृष्ट्वा देवं भृङ्गीश्वरं मुदा ॥६६॥
विद्यावान् जायते विप्रः कवीनामग्रणीर्भवेत्। बन्ध्याऽपि नियमं दृष्ट्वा शीघ्रं गर्भमवाप्नुयात् ॥६७॥
भृङ्गीश्वरस्य सेवातो दरिद्रो धनमाप्नुयात्। अद्यापि भृङ्गरूपेण भृङ्गी पर्वणि पर्वणि ॥६८॥
समायाति मुने द्रष्टुं लिङ्गं भृङ्गीश्वराभिधम्। श्रुत्वाऽध्यायमिमं पुण्यं भृङ्गीश्वरसमुद्भवम् ॥६९॥
यः शृणोति नरः श्रेष्ठः श्रीशम्भोर्विजयं शुचिः। श्रद्दधानः सदा भक्त्या सर्वैनोभिः स मुच्यते ॥७०॥
मनःशुद्धिविहीनत्वात् समस्तं कर्म निष्फलम्। ब्राह्मणं पूजयित्वा च भूषणाच्छादनादिभिः ॥७१॥
लभते तत्तदेवाशु प्रसादाच्छङ्करस्य च। द्विजो विद्यामवाप्नोति वर्षादर्वाङ्न संशयः ॥७२॥

अस्य श्रवणमात्रेण क्षत्रियो विजयी भवेत्। महतीं श्रियमाप्नोति नरेन्द्रेण सुदुर्लभाम् ॥७३॥
श्रुत्वाऽध्यायमिमं पुण्यं महापातकनाशनम्। वैश्यो धनसमृद्धः स्यात् महाधर्ममवाप्नुयात् ॥७४॥

सुत उवाच

श्रुत्वाऽध्यायमिमं पुण्यं शूद्रः सद्‌गतिमाप्नुयात्। इति नेपालमाहात्म्यं मार्कण्डेयस्तपोधनः ॥७५॥
कथयित्वा द्विजातिभ्यः सायंसन्ध्यामुपासितुम्। ययौ शिष्यगणैः सार्धं विभावसुरिवापरः ॥७६॥
अन्येऽपि मुनयः सर्वे ययुः सन्ध्यामुपासितुम्। इदं नेपालमाहात्म्यं गुह्यमत्यन्तदुर्लभम्।
गोपनीयं प्रयत्नेन धार्मिकाय प्रकाशयेत् ॥७७॥

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये त्रिंशोऽध्यायः ॥३०॥

---

जैमिनिले भने – तपाईंले भने अनुसारको क्षेत्र प्रदक्षिणा गरी भृङ्गीले कसरी लिङ्गस्थापना गरे त्यो मलाई भन्नुहोस् ॥१॥

मार्कण्डेयले भन्नुभयो – गुणीहरूमा श्रेष्ठ गुणाढ्यले क्षेत्रप्रदक्षिणा गरेपछि नेपालमा बस्ने सबै मुनिहरूलाई बोलाए। गुह्येश्वरी र वत्सलाको नजिकमा रहेका शङ्खमूलमा रहेका र कुम्भेशको नजिकमा रहेका ब्राह्मणहरूलाई बोलाए। पशुपतिको नजिकमा दोलागिरिमा हनुमत्तीर्थमा र वागीश्वरमा रहेका ब्राह्मणहरूलाई बोलाए। चण्डेश्वरीको नजिकमा र वज्राको नजिकमा रहेका मृगेन्द्र शिखरमा रहेका र विष्णुमतीको मूलमा रहेका ब्राह्मणहरूलाई बोलाए। आशापुरेश्वरमा बस्ने डोलेश्वरमा बस्ने, भारभूतेश्वरमा बस्ने र गोपालेश्वरमा बस्ने ब्राह्मणहरूलाई बोलाए। इत्यादि अनेक तीर्थमा बस्ने तपस्वी र इन्द्रिय जितेकाहरूलाई तिनीहरूको सम्मति लिई वेदोक्त विधिले होमका साथ लिङ्गस्थापना गर्ने काम सुरु गरे। त्यसपछि गुणाढ्य महात्माको यज्ञ सुरु भयो। देऊ र खाऊ भन्ने ठूलो शब्द भयो। मरुत्तको यज्ञ र रामको यज्ञ भैं महात्मा गुणाढ्यको यज्ञ बढ्यो। हे ब्राह्मण ! होमपछि शिवलिङ्ग स्थापना गरे। गुणीहरूमा श्रेष्ठ र नम्र भएका गुणाढ्यले हात जोरेर सबै तपस्वीहरूलाई भन्नलागे ॥२-११॥

गुणाढ्यले भने– हे सबै तपस्वी ब्राह्मणहरू! सुन्नुहोस्, शिवलिङ्गको के नाम राख्ने होला, त्यो भन्नुहोस्। गुणाढ्यको कुरो सुनेर मुनिहरूमा अग्रगण्य हारीत नामका विप्रर्षिले धार्मिक गुणाढ्यलाई भने ॥१२-१३॥

हारीतले भने – गुणाढ्य कुरो सुन्नुहोस्। तपाईं खास मानिस होइन पहिलो जन्ममा कुनै कारणले गर्दा शिवले सराप दिइएको हुनुहुन्छ। तपाईंको नाम भृङ्गी हो र शिवजीको सधैंको ढोके हुनुहुन्थ्यो। यसैले लिङ्गको नाम पनि भृङ्गीश्वर राख्नुहोस् ॥१४-१५॥

मार्कण्डेयले भन्नुभयो – हारीतको कुरो सुनेर वेदशिरा मुनिले भने। वेदशिराले भने– द्वापर युगमा स्पर्शपाषाणबाट बनेको यसलाई भृङ्गीश्वर लिङ्ग भनून् भृङ्गीश्वरलाई कलियुगमा दुनियाँले सुवर्णेश्वर नामले भन्नेछन्। हे मुनिश्रेष्ठ ! सधैं यो सबै चाहना दिने लिङ्ग हो ॥१६॥

मार्कण्डेयले भन्नुभयो – अनि गुणवान् गुणाढ्यले रत्न गाई वस्त्र र सुनहरूद्वारा र असल गुणले ब्राह्मणहरूलाई खुसी पारे। त्यसपछि आकाशबाट मनोहर पुष्पवृष्टि भयो। देवताका दुन्दुभिहरू बजे, अप्सराहरू नाचे। सुखस्पर्श भएको हावा बग्यो, गन्धर्वहरूले ललित गानबजान गरे ॥१६-२०॥

त्यहाँ हेरिरहेका मुनिहरूकहाँ विभिन्न आश्चर्यले युक्त रुद्रको रूप लिएर श्रेष्ठ गणहरू बसिएको मनोहर वृषयान विमान आयो। त्यो ठूलो आश्चर्य देखेर वेद र वेदाङ्गमा पारङ्गत भएका सबै मुनिहरू हडबडाएका र उठे। हे मुनि ! त्यसपछि खरानी र रुद्राक्ष लिएका, त्रिशूल लिएका, गोरा, जयमुकुट लाएका, तीन आँखे दिव्य र हातमा डमरु लिएका शिवका गणहरू विमानबाट ओर्लेर हर्षपूर्वक मुनिहरूलाई भन्नलागे ॥२१-२४॥

वेद र वेदाङ्गमा पार लागेका सबै तपाईं मुनिहरूले आसनमा बसेरै मेरो कुरा सुन्नुहोस्। गणको यस्तो कुरा सुनेर हारीतले ती गणहरूलाई भने ॥२५-२६॥

हारीतले भने – रुद्ररूप धारण गरेका र तेजले गर्दा सूर्य जस्ता तपाईंहरू पनि त्यसरी नै बसेर हरतरहले कथा गर्नुहोस् ॥२७॥

मार्कण्डेयले भने – सबै गणहरू बसेर रमाइला कथाहरू भने।

रुद्रका गणहरूले भने – जो देवताहरूमा सबै देवताका देवता भनिनुहुन्छ, जसले जगत्को सृजना गर्नुभयो, जो सम्पूर्ण जगत्को पालना गर्नुहुन्छ र प्राणीहरूको संहार पनि गर्नुहुन्छ। ती देव परमेश्वर सदाशिव हुनुहुन्छ। जुन रुद्रलाई परमार्थपूर्वक वेदहरूले पनि जान्दैनन् भने यहाँ एउटाले उहाँ सर्वात्मा प्रभुको गुणहरू भन्न सकिन्न। जो परमात्मस्वरूपले सबै जन्तुमा रहनुहुन्छ। ती देव नित्यानन्दमय साक्षात् प्रभु नै हुनुहुन्छ ॥३१॥ जो निर्गुण र देहवान् हुनुहुन्छ, सबैमा रहने तर गोचर हुनुहुन्न,

जसको अन्त स्वयं ब्रह्मा र हरिले पनि जान्नुहुन्न ॥३२॥ तिनलाई सबै देवताहरूले सर्वव्यापी साक्षात् महेश्वर भनेर चिन्तन गर्दछन्। जुन देवताको कृपाले इन्द्रादि देवताले पनि लोकपालत्व पाए, ती देवता पार्वतीका पति हुनुहुन्छ। जसको मसानमा घर छ, जसको निधारमा चन्द्रमा छ र जसको बायाँ अङ्गमा पार्वती छन् ॥२८-३४॥

उहाँले जे भन्नुभएको छ, त्यो सुन्नुहोस्। पापकर्म गर्ने मानिसले पनि लिङ्गस्थापन गर्छ भने सबै पापबाट छुट्छ यसमा विचारै गर्नुपर्दैन। हेलाले, कपटले र शोभाले पनि मानिसले रुद्राक्ष लाउँछ भने तिनीहरूको पाप हुँदैन। जो विभूति लाएका जो रुद्राक्ष लाएका र जो लिङ्ग स्थापना गर्नेछन्, ती कैलास बस्नेहरू हुन्। जो मेरो लिङ्गपूजामा मेरो नाम लिनामा, मेरो फूलको बगैंचा बनाउनमा लागेका छन्, ती कैलास जाने होऊन्। आँक र धतूरोका फूलहरूले बेलको फूलले र जलले जो मलाई पूजा गर्छन्, तिनीहरू कैलास जाने होऊन्। खराब काम गर्ने अथवा सम्पूर्ण पापले युक्त भए पनि लिङ्गस्थापना गर्नाले पाप निश्चय छुटिहाल्छ। मानिसहरूले हेलाले, खिस्सीले र सङ्केतले पनि मेरो नाम लिन्छन् भने घोर पापबाट छुट्छन्। यी गुण गुणाढ्य त संसारमा पूजिएका, आचारवान्, योगले युक्त, वेद वेदाङ्गमा पार लागेका, विद्यावान्, नम्र, स्वाध्यायी देवताको पूजा गर्ने विशेष गरेर मेरा भक्त र मेरो नाम लिनामा तल्लीन छन्। यिनको पूर्वजन्म हे मुनिहरू! सुन्नुहोस् ॥३५-४४॥

यी भृङ्गी पहिले नन्दी जत्तिकै बलिया मेरो रूप धारण गरेका र सधैं मेरो ढोके थिए। एक दिन देवी र म एकान्तमा थियौं, खूब रमाइला कथाहरू भन्ने र सुन्ने गरेका हाम्रो बीचमा त्यहाँ यिनले भृङ्गको रूप लिएर आई मेरो मुखबाट निस्केको सबै कथा सुन्यो। ती रसले पूर्ण भएका कथाहरू आफ्नी पत्नीलाई भने। यो थाहा पाएर मैले सराप दिएँ, यो कैलाशबाट पतित भयो। शिवले तिनको सबै आचरण थाहा पाएर अनि अन्तर्यामी देवदेवद्वारा मानिस होस् भनेर यी सरापिए। गुणीहरूमा श्रेष्ठ गुणाढ्यले बाहुनको कुलमा जन्म पाई रसले युक्त नौ लाख गाथा गरेर देवताहरूका लागि पनि दुर्लभ परम क्षेत्र नेपालमा लिङ्गस्थापना गरे र शिवको दया भयो। यसैले देवदेव शम्भुले दिव्य विमान पठाउनुभयो, विप्र ! गुणाढ्य !आउनुहोस्। विमानमा बस्नुहोस्, सँगै कैलास जाऔं आज शम्भुलाई देख्नुहुनेछ ॥४५-५२॥

मार्कण्डेयले भन्नुभयो – गणको यस्तो कुरा सुनेर गुणाढ्यले उग्र तेज भएका मुनिहरूको मुख हेरे। अनि मुनिहरूको मुख हेर्ने गुणाढ्यलाई हेरेर सुनिरहेका मुनिहरूको बीचमा चण्डतपाले भने ॥५३-५४॥

चण्डतपाले भने – हारीत तपस्वीले पहिल्यै भन्नुभयो नि तपाईं खास मानिस हुनुहुन्न, देवदेवको सेवक हुनुहुन्छ भनेर। परम क्षेत्र नेपालमा तपाईंले लिङ्गस्थापना गर्नुभयो। त्यसैले सरापको अन्त भयो, पार्वतीपति खुसी हुनुभयो। श्रेष्ठ विमानमा चढेर जानुहोस्, महेश्वरलाई हेर्नुहोस्, ब्राह्मण आदिहरूको आशीर्वादले चाँडै महेश्वरलाई हेर्नुहोस् ॥५५-५७॥

मार्कण्डेयले भन्नुभयो – मुनिको यस्तो कुरो सुनेर गुणाढ्य श्रेष्ठ ब्राह्मणहरूसित बिदावारी भएर खूब राम्रो विमानमा तुरुन्तै चढे। अनि मुनिहरूको मुखबाट निस्केको जय शब्द भयो, विद्याधरहरूको हातबाट खसेको फूलवर्षा भयो, देवदुन्दुभिहरू बजे, अप्सराहरू नाचे, सुखस्पर्श हावा बह्यो। गन्धर्वहरूले रसिक भई गुण गाए। गुणीहरूमा श्रेष्ठ गुणाढ्य विमान छुनासाथै शिवको रूप लिएर कैलाश गए। हे विप्र ! यसरी तपाईंलाई भृङ्गीश्वरको उत्पत्ति भनें। भृङ्गीश्वर जस्तो लिङ्ग त न भयो, न हुनेछ। उत्तम क्षेत्र नेपालमा भृङ्गीश्वरलाई जसले हेर्छन्, तिनीहरूको निश्चय मनोरथ सिद्धि हुनेछ। भक्तिपूर्वक चित्तले जसले भृङ्गीश्वरलाई हेर्छन्, भगवान् पार्वतीपतिले तिनीहरूलाई कैलास दिनुहुनेछ। अष्टमीमा, चतुर्दशीमा र सङ्क्रान्तिको दिनमा जसले भृङ्गीश्वरलाई हेर्नेछन्, ती परम गतिमा पुग्नेछन्। देव भृङ्गीश्वरलाई छ महिनासम्म दिनहुँ दर्शन गर्ने ब्राह्मण विद्यावान् हुन्छ र कविहरूमा अग्रणी हुन्छ। नियमपूर्वक दर्शन गरे बाँझीले पनि चाँडै गर्भ पाउनेछन्, भृङ्गीश्वरको सेवाले दरिद्रले धन पाउला ।५८-६७॥

हे मुनि ! आजभोलि पनि भृङ्ग रूप लिएर भृङ्गी पर्वपर्वमा भृङ्गीश्वर लिङ्गको दर्शन गर्न आउँछन्। भृङ्गीश्वरको उत्पत्ति भएको यो पुण्यदायी अध्याय सुनेर जुनश्रेष्ठ मानिसले पवित्र श्रीशम्भुको विजयगाथा सुन्छ, त्यो सधैं भक्तिले श्रद्धा गर्ने सबै बाट त्यसले छुट्कारा पाउँछ। मन शुचि नहुनेका लागि सबै कर्म निष्फल हुन्छन्। गहना र आच्छादनहरूले ब्राह्मणलाई पूजा गरेपछि शङ्करको प्रसादले त्यही त्यही नै तुरुन्त पाउँछ। ब्राह्मणले वर्ष अगाडि नै निश्चय विद्या पाउँछ। यसरी श्रवण गर्नाले मात्रै पनि छेत्री विजयी होओस् र राजाले पाउन नसक्ने श्रीसम्पत्ति पाओस्। ठूलो पाप नाश गर्ने यो अध्याय सुनेर वैश्य धनी होला र ठूलो धर्म पाउला। यो पवित्र अध्याय सुनेर शूद्र असल गति जाला ॥६८-७४॥

सूतजीले भन्नुभयो – तपोधन मार्कण्डेय यस्तो नेपालमाहात्म्य ब्राह्मणहरूलाई भनेर शिष्यहरूका साथ सन्ध्याको उपासना गर्न दोस्रो सूर्य झैं गए। अरू सबै मुनिहरू पनि सन्ध्याको उपासना गर्न गए। गुह्य र पाइनसक्नु यो नेपालमाहात्म्य मेहनतले रक्षा गर्नुपर्छ। धार्मिकलाई यसले प्रकाश प्रदान गरिरहनेछ ॥७५-७७॥

स्कन्दपुराण अन्तर्गत हिमवतखण्डमा नेपालमाहात्म्यको तीसौं अध्याय पूर्ण भयो।

# ५. वैश्वानरपुराणम्

(योगी नरहरिनाथज्यूको भनाइअनुसार यो वैश्वानरपुराण हिमवत्खण्डकै एउटा अंश हो। यसमा अगस्त्य र कुमारको संवाद रहेको छ। यसमा भेरी अञ्चल अन्तर्गत दैलेख जिल्लामा रहेको ज्वालाक्षेत्रको महिमा बताइएको छ। यस वैश्वानरपुराणका छ अध्याय रहेका छन्। यसको अनुवाद योगीजीले नै गर्नुभएको प्रतीत हुन्छ। यस पुराणबाट नेपालका पूर्व, पश्चिम, उत्तर, दक्षिण सबै क्षेत्र तीर्थमय भएको तथ्य प्रमाणित हुन्छ।)

ॐ नमो ज्वालादेव्यै

महेशं गोरक्षं हृदयकमले ध्यानकमलैः समाराध्य ज्वालां स्मरहरदृगुन्मेषजनिताम्।
स्तुवन् पश्यन्नन्तर्जनितजनककल्याणधिषणः पुरावृत्तान्वेषी प्रविततपुराणांशमतुलम्॥१॥
पथिव्योमाक्ष्यव्दे नभसि सितपक्षे शिवतिथौ विधौ पञ्चक्रोशीगतविमदुर्ल्लङ्घ्यनगरे।
शुचिज्वालामाहात्म्यमिह हिमवत्खण्डमिदं हितार्थं लोकानामनुवदति योगी नरहरिः॥२॥

ऋषय ऊचुः

सूत सूत महाप्राज्ञ तव वक्त्राद्विनिर्गताम्। कथासुधां निपीयाऽपि न तृप्यामो वयं क्वचित्॥१॥
कथयस्व प्रसादेन हिमवत्खण्डमध्यगम्। क्षेत्रं वैश्वानरं पुण्यं यत्र ज्वाला विनिर्गता॥२॥

सूत उवाच

साधु पृष्टं महाभागा भवद्भिर्वह्निसंज्ञितम्। क्षेत्रमत्यद्भुतं चास्ति महापुण्यप्रदायकम्॥३॥
वक्ष्यामि तस्य माहात्म्यमगस्त्याय यथा पुरा। वर्णितं कार्तिकेयेन सर्वपापप्रणाशनम्॥४॥

अगस्त्य उवाच

भगवन् भवसम्भूते सर्वशास्त्रविशारद। वद लोकहितार्थाय क्षेत्रं पावकसंज्ञितम्॥५॥

स्कन्द उवाच

अस्ति क्षेत्रं महागुह्यं हिमवत्पार्श्वसंस्थितम्। यत्र ज्वालास्वरूपेण सदा पावकसंस्थितिः॥६॥
वाराणस्याः प्रयागाच्च मायापुर्याः विशेषतः। इदं क्षेत्रं महापुण्यं कलौ कल्पषनाशनम्॥७॥
सर्वलोकोपकाराय तीर्थमेतत् प्रकाशितम्। माहात्म्यमस्य तीर्थस्य गुप्तमेवावतिष्ठते॥८॥
पुरा कृतयुगे शम्भुर्हिमाद्रेरुत्तरे तटे। ब्रह्मयोगं समादाय समाधिस्थो बभूव ह॥९॥
बहुकालो गतस्तस्य समाधिमधितिष्ठतः। तथापि न प्रबुद्धोऽभूद्ब्रह्माऽऽनन्दपरिप्लुतः॥१०॥
तदा भयं समुत्पन्नमसह्यं त्रिदिवौकसाम्। व्याप्तं त्रैलोक्यमखिलं दैत्यैः परमदुर्जयैः॥११॥
वीक्ष्यैतद् व्यसनं घोरं शक्रो व्याकुलमानसः। देवानाहूय सदसि प्रत्युवाच हतप्रभः॥१२॥
देवाः संश्रृणुतेदानीं भगवान् विश्वभावनः। भवो भवार्तिशमनः समाधिमधितिष्ठति॥१३॥
तदभावाद्वयं सर्वे पितृहीनाः सुता इव। सीदामो दितिजत्रासान्न विन्दामः शमं क्वचित्॥१४॥
अतोऽस्माभिर्मिलित्वैव योगस्थोऽपि महेश्वरः। बोधितव्यः प्रयत्नेन निजकल्याणहेतवे॥१५॥
उपायः शोच्यतामत्र भवद्भिर्बुद्धिमत्तरैः। प्रबुद्धो येन भगवान् भवभीतिं विभीषयेत्॥१६॥
श्रुत्वैतद् वचनं सम्यग् देवदेवस्य धीमतः। अन्योन्यं मन्त्रयाञ्चक्रुः सुरा गुरुपुरःसराः॥१७॥
क्षणं विचार्य मदनं बहुमानपुरः सरम्। पुरोधायाऽब्रुवन् देवास्ततः शक्रस्य श्रृण्वतः॥१८॥
मन्मथोऽयं महाराज कार्येऽस्मिन् सन्नियोज्यताम्। यत्प्रभावान्मुनीनां च मनो भवति विद्रुतम्॥१९॥
वसन्तेनाप्सरोभिश्च सह गत्वा महेश्वरम्। मोहयित्वाशु देवोऽयं जगत्क्षेमं विचिन्तयन्॥२०॥
विहायैनं महेशस्य बोधने कोऽपि न क्षमः। अतः संप्रेष्यतां शीघ्रं कार्यार्थे शिवसन्निधौ॥२१॥
इत्याकर्ण्य वचः शक्रो देवानां युक्तिसंयुतम्। धूर्जटेर्ध्यानभङ्गाय मीनकेतुं समादिशत्॥२२॥
ततः सख्या वसन्तेन ह्यप्सरोभिश्च सङ्गतः। गत्वा तु शिवसान्निध्यं स्मरः स्मेरमुखोऽभवत्॥२३॥
वसन्तः पुष्पितः श्रीमान् ननृतुश्चाप्सरोगणाः। जगुर्गन्धर्वपतयः क्षुब्धं हरमनोऽभवत्॥२४॥
शनैः कोपानलज्वाला निःसृता हरनेत्रतः। भस्मीचकार मदनं हाहाकारो महानभूत्॥२५॥

व्याकुलं हिमवच्छृङ्गं न ज्वाला शान्तिमाययौ। व्युत्थितो भगवान् शम्भुः स्मरं दग्ध व्यलोकयत् ॥२६॥
अनुतप्य क्षणं पश्चान्निजनेत्रसमुद्भवाम्। ज्वालां समाक्षिपच्छम्भुः सन्निकृष्य समन्ततः ॥२७॥
तेन क्षिप्ता च सा ज्वाला हिमाद्रेर्दक्षिणे तटे। दुर्लभाख्यगिरेः पार्श्वे पतित्वाऽनेकधाऽभवत् ॥२८॥
तस्याः स्थानत्रयं जातं शिरोनाभिश्च पादुका। तत्र सन्निहिता देवास्तीर्थानि सरितस्तथा ॥२९॥
दर्शनात् स्पर्शनाच्चैव पूजनाद्धवनात्तथा। मुक्तिदा सा महादेवी ज्वाला पावकरूपिणी ॥३०॥
ततःप्रभृति भो ब्रह्मं स्तत् स्थानं जगतीतले। ज्वालाक्षेत्रमिति ख्यातं बभूव शुभदायकम् ॥३१॥
तस्य मध्यप्रदेशं तु धूलिस्थानं निगद्यते। तत्र तिष्ठन्ति सर्वेऽपि देवा लोकहिताय च ॥३२॥
पुरस्तात्तु ह्यधोभागे क्षीरतीर्थं तथा परम्। ब्रह्मकुण्डं ततः पुण्यं कुण्डममृतसंज्ञकम् ॥३३॥
एतयोः स्नानमाहात्म्यं मया वक्तुं न शक्यते। धूलिस्थानस्य नैर्ऋत्ये ह्यधोभागे च पादुका ॥३४॥
प्रागुलावह्निसहिता भुक्तिमुक्तिफलप्रदा। ततो नैर्ऋत्यभागे तु स्वयं तिष्ठाम्यहं मुने ॥३५॥
पादुकोत्तरपार्श्वे तु विद्यते च महानदी। भैरवीति समाख्याता सर्वपापप्रणाशिनी ॥३६॥
तत्र स्नानं तथा श्राद्धं गयातुल्यं भवेन्मुने। होमदानादिकं चापि ह्यक्षयं फलमृच्छति ॥३७॥
ब्रह्मकुण्डस्य चोदीच्यां वाणगङ्गा प्रदृश्यते। गङ्गा च यमुना चैव चन्द्रभागा सरस्वती ॥३८॥
तथा चोर्ध्वमुखी गङ्गा क्षेत्रस्य प्रियकाम्यया। तिष्ठन्ति मुनिशार्दूल तथाऽन्याः सरितोऽपि च ॥३९॥
आसु स्नानं तथा दानं श्राद्धं पूजादि यत्कृतम्। तत् सर्वं कोटिगुणितं प्रसूते फलमव्ययम् ॥४०॥
ततोऽग्रे वर्ततेऽगस्त्य लिङ्गं रौद्रं मनोहरम्। पूजनाद्दर्शनात् सद्यो महापातकनाशनम् ॥४१॥
तस्याग्रे कामधेनुश्च मोक्षधेनुरपि स्फुटम्। कपालमोक्षणं चापि ब्रह्महत्याविनाशकम् ॥४२॥
ऋणमोचनकं चान्यत् पापमोचकं तथा। दृश्यते तीर्थनिकरं वाञ्छितार्थप्रदं नृणाम् ॥४३॥
ततः किञ्चित् पुरस्तात्तु स्वयं विष्णुः सनातनः। धर्मराज इति ख्यातः सह भीमेन तिष्ठति ॥४४॥
नारसिंहस्वरूपेण हरेश्चैव तु संस्थितिः। दृश्यते पुरतस्तस्माल्लोमशस्य मुनेरपि ॥४५॥
दर्शनं पूजनं चैषां सप्तजन्मसुखप्रदम्। कीर्तितं सर्वलोकानां वाञ्छासिद्धिकरं तथा ॥४६॥
ततो गिरेरधस्तात्तु शिवस्थानं निगद्यते। श्वेतवर्णमहारेणुर्दश्यते तत्र सर्वदा ॥४७॥
तत्रस्थं रेणुमादाय ललाटे तिलकं तथा। सर्वाङ्गोद्धूलनं चापि सर्वरोगप्रणाशनम् ॥४८॥
शिवस्थानादधः पुण्या कर्मभूमिः प्रदृश्यते। सर्वकर्मणि सा चेष्टा यत्र ज्वालाऽमृता स्थिता ॥४९॥
तस्याः स्पर्शनमात्रेण दिव्यदेहः प्रजायते। निरामयो नरः सद्यो महारोगयुतोऽपि च ॥५०॥
इन्द्रियाख्यं स्वयंज्योतिर्दृश्यते तत एव हि। पुत्रदं सिद्धिदं चापि प्रसिद्धं जगतीतले ॥५१॥
नाभिस्थानं तु तत्रैव ज्वालादेव्याः प्रकीर्तितम्। तृप्यन्ति पितरो देवाः कृतैस्तत्र सुकर्मभिः ॥५२॥
तस्मिन् स्थाने मृता ये च नराः कीटपतङ्गकाः। सर्वेऽपि शिवरूपेण रमन्ते शिवसन्निधौ ॥५३॥
तत्र दानं च श्राद्धं च जपो होमश्च पूजनम्। क्रियते मनुजैर्विप्र फलाऽऽनन्त्याय कल्पते ॥५४॥
मिष्टान्नैर्भोजयेद्यस्तु विप्रमेकमपि स्वयम्। भोजने कोटिविप्रस्य सम्यक्फलमवाप्नुयात् ॥५५॥
इति स्कन्दपुराणे हिमवत्खण्डान्तर्गतज्वालाक्षेत्रमाहात्म्ये प्रथमोऽध्यायः।

---

**ऋषिहरू सोध्छन्** – हे महाप्राज्ञ सूत तिम्रा मुखबाट निक्लेको कथामृत पान गरेर हामीहरू कहिल्यै तृप्त हुँदैनौ। त्यसैले प्रसन्न भएर हिमवत्खण्डमध्यका पवित्र वैश्वानर क्षेत्रको कथा सुनाऊ, जहाँ ज्वाला प्रकट भएकी छन् ॥१–२॥

**सूत भन्छन्** – हे भाग्यशाली हो ! तपाईंहरूले राम्रो कुरा सोध्नुभयो, अग्निक्षेत्र अति अद्भुत छ र महापुण्यदायक छ। त्यसको समस्त पापनाशक माहात्म्य अघि कार्तिकेयले अगस्त्यलाई जसरी वर्णन गर्नु भएको थियो तेसै गरी म तपाईंहरूलाई कहन्छु ॥३–४॥

**अगस्त्य भन्छन्** – भगवन् शिवपुत्र हे सर्वशास्त्रविशारद ! लोकहितार्थ पावकक्षेत्रको महिमा भन्नुहोस् ॥५॥

**स्कन्द भन्छन्** – हिमालय पर्वतका पासमा महागुप्त क्षेत्र छ जहाँ दुल्लूमा ज्वालास्वरूपले सदा अग्नि रहन्छ। काशी प्रयाग मायापुरीभन्दा विशेष गरेर यो ज्वालाक्षेत्र महापुण्यदायक र कलिमा पापनाशक छ। समस्त लोकको उपकार गर्ना निम्ति

यो तीर्थ प्रकाशित गरिएको हो तर यस वैश्वानरतीर्थको माहात्म्य गुप्तै छ। अघि सत्ययुगमा शिव हिमालयका उत्तर तटमा ब्रह्मयोगको ध्यानमा समाधिस्थ हुनु भयो। यसरी समाधिमा विराजमान हुनु भएका ब्रह्मानन्दमग्न शिवको धेरै समय बित्यो तथापि प्रबुद्ध हुनु भएन॥६-१०॥

त्यो बेला देवताहरूलाई ठूलो भय उत्पन्न भयो किनकि परम दुर्जय दैत्यहरूले समस्त त्रैलोक्य व्याप्त गरी सकेका थिए। त्यो घोर विपत्ति देखेर व्याकुलचित भएका निस्तेज इन्द्रले देवताहरूलाई सभामा बोलाएर भन्न लागे। हे देवता हो सुन अचेल भगवान् विश्वका अभिभावनकारी र संसारको भयनाश गर्ने शिव योगसमाधिमा विराजमान हुनु हुन्छ। शिव नहुनाले हामी सबै माता पिता नरहेका दुःखी अनाथ टुहुरा जस्ता भएर दितिका छोराहरूका त्रासले कतै सुख पाउदैनौं॥११-१४॥

यस कारण हामीहरूले मिलेर योगस्थ छन् तापनि महेश्वरलाई आफ्ना कल्याणका लागि प्रयत्नले जगाउनु पर्‍यो। यस विषयमा उपाय सोच्नुहोस्, तपाईहरू बुद्धिमान् हुनुहुन्छ, जुन उपायले समाधिबाट प्रबुद्ध भएर भगवान् शिव संसारको भयलाई भयभीत गरून्। देवताहरूका राजा बुद्धिमान् इन्द्रको यस्तो वचन राम्रोसँग सुनेर बृहस्पति प्रभृति देवताहरू परस्पर मन्त्रणा गर्न लागे। क्षणभर विचार गरी बहुत मानपूर्वक कामदेवलाई अघि सारेर अनि इन्द्रजाल सुनाएर देवताहरू भन्न लागे। महाराज यस काममा यो मन्मथ कामदेव खटइयोस्, जस्का प्रभावले मुनिहरूको मन पनि चञ्चल हुन्छ॥१५-१९॥

वसन्त ऋतु र अप्सराहरूसँग गएर यो कामदेव संसारको कल्याण चिन्तना गर्दै महेश्वरलाई शीघ्र मोहित गरोस्। यस कामदेवलाई छोडेर महेश्वरलाई जगाउन अरू कोही सक्तैन अतः शीघ्र यसैलाई कार्यसिद्धिका निम्ति शिवका समीपमा पठाउनु पर्छ। यस्तो देवताहरूको युक्तियुक्त वचन सुनेर देवराज इन्द्रले महादेवको ध्यान भङ्ग गर्न मकरध्वज कामदेवलाई आदेश दिए। तदनन्तर सखा वसन्त र अप्सराहरूसित गएर कामदेव शिवका निकटमा अलि अलि हाँस्न लाग्यो। श्रीमान् वसन्त ऋतु पुष्पित भयो। अप्सरागणहरू नाच्न लागे। गन्धर्वका नाइकेहरू गाउन लागे। हरको मन क्षुब्ध भयो॥२०-२४॥

महादेवका नेत्रबाट बिस्तारैसँग निक्लेर क्रोधाग्निको ज्वालाले मदनलाई भस्मसात् गर्‍यो। महान् हाहाकार भयो। हिमालयका टकुरा पनि व्याकुल भए, तथापि हरको कोपानलज्वाला शान्त भएन, शिवले समाधिबाट व्युत्थित भएर कामलाई भस्म भएको देख्नु भयो। क्षणभर पश्चात्ताप गरेर शिवले आफ्ना नेत्रबाट प्रकट भएको ज्वालालाई चारैतिरबाट बटुलेर फालिदिनु भयो॥२५-२७॥

महेश्वरले पछाडेकी त्यो ज्वाला हिमालयका दक्षिण तटमा दुर्लभ पर्वतका पासमा परेर अनेक प्रकारको भयो। ती ज्वालाका मुख्य तीन स्थान भए, शिरस्थान, नाभिस्थान, पादुकास्थान यी तीनै स्थानमा समस्त देवता, तीर्थ तथा नदीहरू आएर बसे। दर्शन गर्नाले स्पर्श गर्नाले पूजा गर्नाले तथा हवन गर्नाले ती वैश्वानरकी ज्वालारुपिणी महादेवी शक्ति मुक्ति पनि दिन्छिन्॥२८-३०॥

हे अगस्त्य त्यो बेला देखि त्यो शुभदायक स्थान संसारमा ज्वाला क्षेत्रका नामले प्रसिद्ध भयो। त्यस ज्वालाक्षेत्रको मध्यप्रदेश धुलिस्थान भनिन्छ, लोकहितार्थ त्यहाँ सबै देवता रहन्छन्। सम्मुख अलि तल क्षीरतीर्थ छ, पवित्र ब्रह्मकुण्ड र अमृतकुण्ड पनि छन्। यिनमा स्नान गरेको माहात्म्य मैले पनि भनि सकिदैन, धूलिस्थानदेखि नैर्ऋत्यकोणमा तल भुक्तिमुक्ति फल दिने प्रष्ट्यंगुली वैश्वानर ज्वालासहित पादुका छन्, हे मुनि ! पादुकाका नैर्ऋत्य भागमा त म स्वयं निवास गर्छु॥३१-३५॥

पादुका ज्वालादेखि उत्तर भागमा भैरवी नामकी सर्वपापनाशिनी महानदी छन्। भैरवीमा स्नान र श्राद्ध गयातुल्य फलदायक छ, हे मुनि होमदानादिको पनि अक्षय फल पाइन्छ। ब्रह्मकुण्डका उत्तरमा वाणगङ्गा देखिन्छन्, गङ्गा यमुना चन्द्रभागा र सरस्वती तथा ऊर्ध्वमुखी गङ्गा क्षेत्रका प्रियकामनाले निवास गर्छन्,हे मुनिश्रेष्ठ ! एवं अन्य नदीहरू पनि रहन्छन्। यी सबै नदीहरूमा स्नान दान श्राद्ध पूजा जप तप आदि जो गरिन्छ, त्यो सबै कोटिगुणा अक्षय फल दिन्छ॥३६-४०॥

हे अगस्त्य त्यहाँदेखि अगाडि रुद्रको मनोहर लिङ्ग छ। त्यसको दर्शन पूजन आदि गर्नाले तत्काल महापातकको नाश हुन्छ। त्यो रुद्रलिङ्गदेखि अगाडि कामधेनु, मोक्षधेनु, कपालमोचन, ब्रह्महत्यामोचन, ऋणमोचन, पापमोचन आदि अनेक तीर्थ मनुष्यका वाञ्छितफलदायक देखिन्छन्॥४१-४३॥

त्यहाँदेखि अलि पर स्वयं सनातन विष्णु धर्मराजका नामले प्रसिद्ध भै भीमसँग विद्यमान छन्। अलि पर नरसिंहस्वरूपले हरि रहन्छन्। त्यसभन्दा पर लोमश मुनि पनि विद्यमान छन्। उपर्युक्त देवताहरूको दर्शन र पूजन सात जन्मसम्म सुखदायक र सर्वलोकको इच्छासिद्धिकारक भनिएको छ। त्यहाँदेखि पर्वत मुनि शिवस्थान भन्छि। त्यस स्थानमा सदा श्वेतवर्णको महारेणु देखिन्छ। त्यो रेणु लिएर ललाटमा तिलक तथा सर्वाङ्गमा मर्दन गर्नाले सर्वरोगको नाश हुन्छ। शिवस्थानदेखि तल पुण्य कर्मभूमि देखिन्छ। त्यहाँ सबै कर्म गर्नु उत्तम छ। जहाँ अमृत ज्वाला छन्॥४४-४९॥

अमृतज्वालाको स्पर्शमात्रले दिव्यदेह हुन्छ। महारोगी मनुष्य पनि तत्काल निरोगी हुन्छ॥५०॥ त्यसै ठाउँमा इन्द्रियाख्य स्वयंज्योति देखिन्छ, त्यो पुत्रदायक र सिद्धिदायक भनी पृथ्वीतलमा प्रसिद्ध छ॥५१॥ ज्वालादेवीको नाभिस्थान यहीं प्रसिद्ध

छ। नाभिस्थानमा गरेका सबै सत्कर्महरूले देवता र पितृहरू तृप्त हुन्छन् ॥५२॥ नाभिस्थान ज्वालामा मरेका मानिस कीट-पतङ्ग आदि सबै प्राणीहरूशिवसारूप्य मुक्ति प्राप्त गरेर शिवका समीपमा रमण गर्छन्। हे विप्र नाभिस्थानमा मनुष्यहरूले गरेको दान,श्राद्ध, जप, होम, पूजा, पाठ, ध्यान आदि सत्कर्मले कल्पवृक्षजस्तो अनन्त फल दिन्छ। जो मिठाइहरूले स्वयं एक विप्रलाई पनि भोजन गराउँछ। त्यो कोटि विप्र भोजनको राम्रोसँग फल पाउँछ ॥५०-५५॥

प्रथम अध्याय पूरा भयो।

## द्वितीयोऽध्यायः

अगस्त्य उवाच

देवदेव महादेवसूनो भूयोऽपि कथ्यताम्। पावकक्षेत्रसंस्थानां स्थानानां महिमा प्रभो ॥१॥

स्कन्द उवाच

नाभिस्थानादधः पुण्यं भृगुस्थं प्रकीर्तितम्। देहत्यागाच्च तत्रैव मुक्तिः करतले स्थिता ॥२॥
ततः पूर्वं नदीतीरे केदारेश्वरमव्ययम्। दृष्ट्वा संपूज्य विप्रेन्द्र पुनर्जन्म न विद्यते ॥३॥
ततः प्राच्यामधोभागे ब्रह्महत्याविमुक्तिदम्। ब्रह्मकुण्डं तथा विष्णुशिवकुण्डं तथा परम् ॥४॥
अमृतं कुण्डमप्यस्ति कुण्डं रासातलं तथा। दृश्यन्ते निर्मलाकाराः कुण्डाः पापहराः शुभाः ॥५॥
दृश्यन्ते चाग्निकुण्डेऽस्मिन् ज्वालास्तिस्रो मनोहराः। हवनं पूजनं स्नानं तत्र मोक्षप्रदं नृणाम् ॥६॥
क्षेत्रपालस्ततः पूज्यो यात्राफलमभीप्सुभिः। तेन निर्विघ्नतो यात्रा यात्रिणां पूर्णतां व्रजेत् ॥७॥
ततः प्राच्यामधोभागे सारगङ्गा शुभावहा। दृश्यते सुसरित् तस्यां कुर्यात् पिण्डादिकं नरः ॥८॥
ततः पूर्वं महापुण्या विद्यते ह्रदकासृता। विशालभूमिस्तत्रापि स्नानं श्राद्धं प्रशस्यते ॥९॥
मोक्षतीर्थन्तु तत्रैव ज्वालायाः सन्निधौ शुभम्। पितॄनुद्धर्तुकामो हि तत्र पिण्डान् विनिर्वपेत् ॥१०॥
स्वर्णदानं च कुर्वीत श्रद्धया स्वर्गकाम्यया। स्थित्वाऽश्वत्थतरोर्मूले वसुधाकुण्डसन्निधौ ॥११॥
कोटितीर्थमिति ख्यातं भुक्तिमुक्तिप्रदायकम्। तत्रैव विद्यते तस्मिन् कृतं कर्माऽक्षयं भवेत् ॥१२॥
गृहाच्चलितमात्रेण क्षेत्रं वैश्वानरं प्रति। प्राप्यते चाश्वमेधस्य फलं विप्र पदे पदे ॥१३॥
यावदिन्द्रश्च सोमश्च रविस्तिष्ठति तद्गताः। पितृमातृऋणैर्मुक्तास्तावन्मर्त्या भवन्ति च ॥१४॥
श्राद्धकृद्यस्तु क्षेत्रेऽस्मिन्नरस्तारयते कुलम्। आत्मना सह विप्रेन्द्र दश पूर्वान् दशापरान् ॥१५॥
पतनात्पशुसङ्ग्रामाद्विषाद्वा पन्नगादपि। मृताः स्युर्मानवा यत्र मुच्यन्ते तेऽपि तत्क्षणम् ॥१६॥
कृमिकीटपतङ्गाश्च पशवोऽपि तथा परे। ये चात्र संस्थिताः सत्त्वास्तेऽपि स्वर्गं व्रजन्ति च ॥१७॥
मूर्खा नरा न जानन्ति माहात्म्यं चास्य भूतले। गयातुल्यमिदं क्षेत्रं पितॄणां तारणाय च ॥१८॥
हुतं दानं पूजनं च वैश्वानरशिखामुखे। ससरिद्द्वीपवसुधादानतुल्यफलं भवेत् ॥१९॥
यवास्तिलास्तथा धान्यं घृतं कृत्वा च मिश्रितम्। जुहुयादाहुतीः पञ्च दद्याद् गां च पयस्विनीम् ॥२०॥
ब्राह्मणान् भोजयेत् पश्चाद् दक्षिणाभिश्च तोषयेत्। तेन तृप्यन्ति देवाश्च पितरः स्वर्गता अपि ॥२१॥
यवव्रीहितिलानां च हुतानां संख्यया समम्। स्थित्वा वर्षगणं स्वर्गे जायते स शुभे कुले ॥२२॥
करोति भूमिदानं च पावकस्य पुरः पुमान्। निवसेत् स तु स्वर्लोके यावदिन्द्राश्चतुर्दश ॥२३॥
मध्ये ब्रह्मशिलायास्तु योऽन्नदानं करोति च। ब्राह्मणान् भोजयेच्चाऽपि तस्य पुण्यमनन्तकम् ॥२४॥
तत्र कृतेन पुण्येन दत्तैः श्राद्धादिकैरपि। निवसन्ति नराः स्वर्गे यावदिन्द्राश्चतुर्दश ॥२५॥
निराहारव्रतं कृत्वा नराः पञ्चत्वमागताः। अपत्नीकाः सपत्नीकास्तेपि यान्ति परां गतिम् ॥२६॥
ब्रह्मा विष्णुश्च रुद्रश्च यावत्तिष्ठन्ति तावता। कालेन ते नराः स्वर्गं विमानैः सम्प्रयान्ति च ॥२७॥
वैष्णवाश्च तपोनिष्ठा जितक्रोधा जितेन्द्रियाः। ब्रह्मचर्यव्रतस्थाश्च योगिनोऽपि विशेषतः ॥२८॥
क्षेत्रं वैश्वानरं प्राप्य म्रियन्ते कालयोगतः। तेऽपि गच्छन्ति परमं पदमाचन्द्रतारकम् ॥२९॥
जन्मजन्मकृतं पापं तेषां चैव विनश्यति। एतेन सदृशं क्षेत्रं न भूतं न भविष्यति ॥३०॥
ब्राह्मणाः क्षत्रिया वैश्याः शूद्राश्चाण्डालजातयः। क्षेत्रं वैश्वानरं गन्तुं सर्वेऽप्यर्हन्ति भूतले ॥३१॥

यत्र वैश्वानरी ज्वाला पयोधारासमन्विता। विनिःसरत्यविच्छिन्ना दृश्यते गिरिर्गततः ॥३२॥
प्रज्वलत्यनिशं वह्निर्नानावर्णाकृतिः सदा। विनिर्गत्य स्वयं यत्र मृच्छिलामयभूतलात् ॥३३॥
क्वचिल्लीनाः क्वचिद्व्यक्ताः क्वचिन्नित्यं प्रदीपिताः। ज्वालाः सूक्ष्मास्तथा स्थूला यत्र सन्ति मनोहराः ॥३४॥
दृष्ट्वा चैतन्महच्चित्रं कुतूहलसमाकुलम्। पापघ्नं पावकं क्षेत्रं दृष्ट्वा विस्मयं को न विन्दते ॥३५॥
तपोयोग्यं ध्यानयोग्यं रहस्यातिरहस्यकम्। दुष्प्रापं योगिभिश्चैव क्षेत्रमेतन्न संशयः ॥३६॥
इन्द्रादयः सुराः सर्वे ब्रह्मविष्णुपुरःसराः। ससरीसृपगन्धर्वविद्याधरनदीनदाः ॥३७॥
तिष्ठन्ति गुप्तरूपेण लोकानां शुभहेतवे। क्षेत्रेऽस्मिन् पावके ब्रह्मन् भुक्तिमुक्तिफलप्रदाः ॥३८॥
स्वयं शेषो भवेद्वक्ता स्वयं वै गणपो लिखेत्। तथापि पुण्यदं चास्य माहात्म्यं नैव पार्यते ॥३९॥
यदि मोहात् प्रमादाद्वा विद्याधनमदादपि। निन्दां प्रकुरुते चास्य स तु भस्मीभविष्यति ॥४०॥
अवजानन्ति ये मूढा ज्वालां देवीं सनातनीम्। तत्क्षेत्रस्थांस्तथा देवान् स्थानानि च विशेषतः ॥४१॥
हरकोपानलज्वाला कुलमेकोत्तरं शतम्। तेषां करोति चाङ्गारं गृहं धान्यं धनं जनम् ॥४२॥
ये मानयन्ति पूजाभिर्होमैर्दानादिकैरपि। श्राद्धैः श्रद्धायुतैश्चैव हरस्तेषां प्रसीदति ॥४३॥

इति स्कन्दपुराणोक्तहिमवत्खण्डान्तर्गतज्वालाक्षेत्रमाहात्म्ये द्वितीयोऽध्यायः ॥२॥

---

अगस्त्य भन्छन्– हे प्रभो ! हे देवदेव ! हे महादेवका पुत्र ! पावक क्षेत्रको संस्थान र स्थानहरूको महिमा फेरि पनि भन्नुहोस् ॥१॥

स्कन्द भन्छन् – नाभिस्थानदेखि तल पवित्र भृगुस्थान छ। त्यस ठाउँमा देहत्यागले मुक्ति पाइन्छ ॥२॥ भृगुस्थानदेखि पूर्वपट्टि नदीका तीरमा अविनाशी केदारेश्वरको दर्शन गरेर पूजा गर्नाले हे विप्रेन्द्र ! पुनर्जन्म हुँदैन ॥३॥ केदारेश्वरदेखि पूर्वतिर अलितल ब्रह्महत्याबाट मुक्ति दिने ब्रह्मकुण्ड, विष्णुकुण्ड तथा शिवकुण्ड छन् ॥४॥ त्यसै ठाउँमा अमृतकुण्ड र रसातल कुण्ड पनि छन्। यी सबै कुण्ड निर्मल आकारका, पाप हरण गर्ने र शुभ देखिन्छन् ॥२–५॥

यसै स्थानका यस अग्निकुण्डमा मनोहर तीन ज्वाला देखिन्छन्, यी ज्वालामा हवन, पूजन, स्नान आदि मानिसहरूलाई मोक्षदायक छन्। तदनन्तर यात्राको फल चाहनेहरूले क्षेत्रपालको पूजा गर्नुपर्छ। यसले निर्विघ्न यात्रीहरूको यात्रा पूर्ण हुन्छ। त्यस ठाउँदेखि पूर्वभागमा तलतिर शुभकारक सारगङ्गा देखिन्छ। त्यसमा मानिसले पिण्डदान आदि कर्म गरोस्। सारगङ्गादेखि पूर्वपट्टि महापुण्य विशाल उदकासृत भूमि छ। त्यहाँ पनि स्नान,श्राद्ध गर्नु असल छ। त्यसै स्थानमा ज्वालाका निकटमा शुभ मोक्षतीर्थ छ। पितृहरूको उद्धार गर्ने इच्छा हुने मानिसले त्यस ठाउँमा पिण्डदान गरोस्। वसुधाकुण्डका समीपमा पिप्पलका चौतारामा बसेर स्वर्गको कामना छ भने श्रद्धाले स्वर्णदान गरोस्। त्यसै स्थानमा भुक्तिमुक्तिदाता प्रख्यात कोटितीर्थ छ। त्यस तीर्थमा गरेको कर्म अक्षय हुन्छ ॥६–१२॥

हे अगस्त्य ! वैश्वनरक्षेत्रप्रति घरबाट उठेर हिँड्नासाथ एक–दुई पाइलामा अश्वमेध यज्ञको फल पाइन्छ। जबसम्म इन्द्र, चन्द्र, सूर्य रहन्छन्, तबसम्म वैश्वानरक्षेत्रको पञ्चक्रोशीयात्रा गर्ने मानिस मातृ–पितृऋणदेखि मुक्त हुन्छन्। हे अगस्त्य ! यस दुल्लू ज्वालाक्षेत्रमा श्राद्ध गर्ने मनुष्यले आफूसहित कुलका दश पूर्वज र दश भावी सन्तानलाई तार्छ। लोटेर, पशु जुधेर, विष खाएर, सर्पले टोकेर मरेका मानिस पनि ज्वालाक्षेत्रमा तत्क्षण मुक्त भै हाल्छन्। कमिला, कीरा, फट्याङ्ग्रा आदि पशुपक्षीहरू र अरू समस्त जन्तु जो यस पवित्र ज्वालाक्षेत्रमा निवास गर्छन्, ती पनि स्वर्ग जान्छन्। यस ज्वालाक्षेत्रको महिमा मूर्ख मानिस जान्दैनन्, भूमण्डलमा यो क्षेत्र पितृहरूलाई तार्नमा गयातुल्य छ। वैश्वानरका शिखामुखमा हवन, दान, पूजन आदिले नदी–द्वीपसहित पृथ्वीको दान गरेतुल्य फल हुन्छ ॥१३–१९॥

जौ, तिल, धानहरू घिउमा मुछेर पाँच आहुति हवन गरोस्, दुधालु गाई दान गरोस्, ब्राह्मणहरूलाई भोजन गराओस्, पछिबाट दक्षिणाले सन्तुष्ट गरोस्, यसो गर्नाले देवता र स्वर्गमा गएका पितृ पनि तृप्त हुन्छन्। हवन गरेका जौ, तिल, धानका गेडा जति वर्ष स्वर्गमा बसेर त्यो मानिस शुभकुलमा जन्मन्छ। वैश्वानरज्वालाका अगाडि जो पुरुष भूमिदान गर्छ, त्यो चौध जना इन्द्र भएसम्म स्वर्गवास गर्छ। जो ब्रह्मशिलाका मध्यमा अन्नदान र ब्राह्मणभोजन गर्छ, त्यसको पुण्य अनन्त हुन्छ ॥२०–२४॥

ब्रह्मशिलामा गरेका पुण्य र श्राद्धादि कर्मले चौध जना इन्द्र हुञ्जेल मनुष्य स्वर्गवास गर्छन्। यस तीर्थमा निराहारव्रत गरेर मरेका सपत्नीक तथा अपत्नीक मनुष्य पनि परम गति पाउँछन्। ब्रह्मा, विष्णु, रुद्र जबसम्म रहन्छन्, तबसम्म ती मानिस विमानद्वारा स्वर्ग जान्छन्। जो वैष्णव, तपस्वी, जितक्रोध, जितेन्द्रिय, ब्रह्मचारी, व्रती, विशेष गरेर योगीहरूले वैश्वानरक्षेत्रमा

आएर कालयोगले देह त्याग्छन्, ती चन्द्र–तारा रहुञ्जेल परमपदमा जान्छन्। तिनको जन्म–जन्ममा गरेको पाप नष्ट हुन्छ, यस ज्वालाक्षेत्रसमान अरू क्षेत्र न भयो, न होला ॥२५–३०॥

ब्राह्मण, क्षत्रिय, वैश्य, शूद्र, चाण्डाल जाति सबैले वैश्वानरक्षेत्रको यात्रामा जानुहुन्छ। जुन भूतलबाट पर्वतका खोल्सामा जलधारासहित वैश्वानरीज्वाला निरन्तर निक्लेकी देखिन्छन्। जुन दुल्लुमा मायेढुङ्गा मिसिएका भूतलबाट स्वयं निक्लेर सदा नानावर्ण अनेक आकृतिको अग्नि दिन–रात बलिरहन्छ। जुन वैश्वानरक्षेत्रमा कतै विलीन प्रायः कतै व्यक्त, कतै–कतै नित्य जाज्वल्यमान, कतै सूक्ष्म, कतै ठूलाठूला मनोहर ज्वाला छन्। यस्तो विचित्र, आश्चर्यजनक, कौतूहलपूर्ण, पापनाशक, पावक क्षेत्र देखेर कुन मानिस विस्मित हुँदैन ? यो ज्वालाक्षेत्र तपोयोग्य, ध्यानयोग्य, अतिरहस्यमय योगीहरूलाई पनि दुर्लभ छ, यसमा संशय छैन ॥३१–३६॥

भुक्तिमुक्तिफलदायक इन्द्रादि सबै देवता, ब्रह्मा, विष्णु, रुद्र, यक्ष, किन्नर, गन्धर्व, विद्याधर, नाग, नदी, नदहरू गुप्तरूपले यस पावकक्षेत्रमा हे विप्र ! लोककल्याणार्थ निवास गर्छन्। स्वयं शेषनाग वक्ता र स्वयं गणेश लेखक भए पनि यस ज्वालाक्षेत्रका पुण्यदायक माहात्म्यको पार पाउन सकिँदैन। यदि कोही मोहले, प्रमादले, विद्यामदले र धनमदले यस तीर्थको निन्दा गर्ला, त्यो भस्म होला। जो मूढहरू सनातनी ज्वालादेवीको अपमान गर्छन्, ज्वालाक्षेत्रका देवता र तीर्थस्थानहरूको अपमान गर्छन्, तिनका एक सय कुल, घर, धन, धान्य र परिजनलाई महादेवका क्रोधाग्निका ज्वालाले अङ्गार गरी छाड्छन्। जो पूजा, होम, दान,श्रद्धायुक्त श्राद्ध इत्यादिले मान राख्दछन्, तिनमाथि शिव प्रसन्न रहन्छन् ॥३७–४२॥

द्वितीयाध्याय समाप्त ॥

## तृतीयोऽध्यायः

स्कन्द उवाच

शृणु ब्रह्मन्प्रवक्ष्यामि ज्वालाक्षेत्रस्य चोत्तमम्। माहात्म्यसूचकं पुण्यं वृत्तान्तं परमाद्भुतम् ॥१॥
आसीदतीव धर्मात्मा द्विजो भोजकटे पुरा। सर्वशास्त्रार्थतत्वज्ञो ब्रह्मकर्मपरायणः ॥२॥
श्रुतशीलगुणोपेतो द्विजदेवसमर्चकः। देवशर्माऽभिधस्तस्य भार्याऽऽसीदतिकर्कशा ॥३॥
विमुखा गृहकृत्येषु नित्यं कलहकारिणी। व्यभिचाररता पत्युः कष्टदात्री निरङ्कुशा ॥४॥
एकदा सा विशालाक्षी तीर्थयात्राच्छलेन च। वञ्चयित्वा पतिं गेहान्निश्चक्राम विटैः सह ॥५॥
विहरन्ती सुखं तैस्तैर्विटैः संभोगलोलुपैः। पश्यन्ती विविधान्देशान् गिरिकाननभूषितान् ॥६॥
क्षेत्रं पाशुपतं प्राप्य वाङ्मतीतटसंस्थिते। मठे वसन्ती सा कालं निनाय बहुवत्सरम् ॥७॥
नानाविधैः सुदुर्वृत्तैर्विटैर्भुक्तवती सुखम्। सञ्चयं बहुवित्तस्य चक्रे सा मुदिता भृशम् ॥८॥
ततः कालेन सा सुभ्रूर्जरां प्राप्य सुदुःखिता। रोगग्रस्ता हृतधना तस्करैः पीडिता भृशम् ॥९॥
आशक्ता प्राणयात्रार्थं काकिणीमप्युपार्जितुम्। भिक्षुकीरूपमास्थाय बभ्राम च गृहे गृहे ॥१०॥
जर्जरेण शरीरेण भुक्त्वा च बहुयातनाम्। नेपालदेशं त्यक्त्वैव प्राप सा गण्डकीतटम् ॥११॥
दिनानि कतिचित्तत्र स्थित्वा दुःखेन सा पुनः। प्राप्योदीचीं महारण्ये तरुमूलमुपाविशत् ॥१२॥
तदैव दैवयोगेन व्याघ्रः कश्चित् समागतः। दृष्ट्वा च मानुषीं वृद्धां तां ददाराऽऽमिषाऽऽशया ॥१३॥
तेन व्याघ्रप्रहारेण गतप्राणा च सा यदा। यमदूतैर्गृहीत्वा तु नीता यमपुरं प्रति ॥१४॥
तदा भाग्यवशात्तस्या व्याघ्रभुक्तावशेषितम्। अस्थिखण्डं गृहीत्वा तु गृध्रः कोऽपि नभोगतः ॥१५॥
दुर्लभाख्यगिरिं प्राप्य ज्वालाक्षेत्रान्तरे सुखम्। भोक्तुमारब्धवाँस्तत्र नखैस्तुण्डैर्विदारयन् ॥१६॥
तन्मुखाद् गलितं किञ्चिन्मांसमस्थिशिरादिकम्। ज्वालामध्ये विगलितं भस्मसादभवत्क्षणात् ॥१७॥
एतस्मिन्नेव काले तु याम्यैर्नीता च साऽसती। सद्यो विमानमारुह्य विष्णुदूतैः सुसत्कृता ॥१८॥
जगाम भवनं विष्णोर्दिव्येन वपुषा मुने। ज्वालाक्षेत्रस्य माहात्म्यं जानीहि परमाद्भुतम् ॥१९॥

अगस्त्य उवाच

धन्योऽहं कृतपुण्योऽहं वह्निक्षेत्रस्य पुण्यदम्। श्रुतं माहात्म्यमतुलं देवानामपि दुर्लभम् ॥२०॥
ब्रूहि मे तत्र गत्वा तु स्नात्वा हुत्वा हुताशनम्। समभ्यर्च्य तथा कृत्वा श्राद्धदानादिकानपि ॥२१॥

पुण्यकर्मभिरन्यैश्च किं फलं लभ्यते नरैः। पापानि कानि नश्यन्ति संशयोऽत्र मम प्रभो ॥२२॥

स्कन्द उवाच

मुने वक्ष्याम्यहं सर्वं विस्तरेण तवाऽधुना। वह्निक्षेत्रस्य माहात्म्यं पुण्यदं पापनाशनम् ॥२३॥
ब्रह्मघ्नश्च सुरापश्च स्त्रीघ्नो बालघ्न एव च। वाराणस्यां प्रमुच्यन्ते ते सर्वेऽपि तपोधन ॥२४॥
वाराणस्यां दशगुणमिदं पावकसंज्ञितम्। विद्धि क्षेत्रं महापुण्यं महापापप्रणाशनम् ॥२५॥
अन्नकूटं तुलाकूटं कन्याभृत्यगवां चयम्। हृत्वा समुद्भवं पापं सुवर्णहरणादपि ॥२६॥
दधि दुग्धं घृतं चैव लवणं वस्त्रभाजने। अपहृत्य परक्षेत्रं परदारापकर्षणात् ॥२७॥
गोमांसभक्षणाच्चैव ब्रह्मस्वहरणादपि। उपार्जितं तथाऽन्यच्च ज्ञानतोऽज्ञानतोऽपि वा ॥२८॥
तत्सर्वं लीयते सद्यः क्षेत्रं प्राप्य च पावकम्। सन्देहो नात्र कर्तव्यः सत्यमेतद् ब्रवीमि ते ॥२९॥
अग्निदग्धं यथा स्वर्णं निर्मलं जायते तथा। ज्वालासंस्पर्शमात्रेण शुध्यते पातकी जनः ॥३०॥
यथा दीप्तः सहस्रांशुः सुधापूर्णश्च चन्द्रमाः। शुद्धं च स्फटिकं यद्वद् दृश्यते मानवस्तथा ॥३१॥
ज्वालाक्षेत्रस्थिता नित्यं ज्वालार्चनरतास्तथा। ये नराः सन्ति ते धन्याः पूज्यास्ते त्रिदशैरपि ॥३२॥
ब्राह्मणाः क्षत्रिया वैश्याः शूद्राश्चाण्डालजातयः। द्विपदाश्च चतुष्पादः कृमिकीटपतत्रिणः ॥३३॥
उद्भिदो जलजाश्चैव ह्यण्डजाश्च जरायुजाः। सर्वेऽपि ते प्रमुच्यन्ते क्षेत्रं प्राप्य च पावकम् ॥३४॥
वैकुण्ठे रुद्रलोके च ब्रह्मलोके तथैव च। यान्ति ते कर्मभोगाय कल्पान्तं भुञ्जते सुखम् ॥३५॥
इति स्कन्दपुराणोक्तहिमवत्खण्डान्तर्गतज्वालामाहात्म्ये तृतीयोऽध्यायः ॥३॥

---

स्कन्द भन्छन् – हे अगस्त्य ! सुन, ज्वालाक्षेत्रको उत्तम माहात्म्यसूचक परमाद्भुत पुण्यमय वृत्तान्त कहन्छु। अघि भोजकट भन्ने ठाउँमा अति धर्मात्मा सबै शास्त्रको तत्व जानेको, ब्रह्मकर्मपरायण, गुणशीलयुक्त, द्विज र देवताको पूजक देवशर्मा नामको ब्राह्मण थियो, तर त्यसकी स्वास्नी अतिकर्कशा, घरकाजदेखि विमुख, नित्य कलह गर्ने, व्यभिचारमा लागेकी, पतिलाई कष्ट दिने, निरंकुश र उच्छृङ्खल थी ॥१-४॥

एक दिन त्यो ठूला-ठूला आँखा भएकी स्त्री तीर्थयात्राका निहुले पतिलाई छलेर विटहरूसित घरबाट निस्की। विषयलोलुप ती नयाँ नयाँ विटहरूसित स्वच्छन्द सुखपूर्वक विहार गर्दै वन-पर्वतहरूले भूषित विविध प्रकारका देशहरू हेर्दै डुल्न लागी। यस्तै प्रकारले पाशुपतक्षेत्रमा पुगेर वाग्वतीका तटका एउटा मन्दिरमा बसेर त्यसले धेरै वर्ष बिताई। नाना प्रकारका दुराचारी लफङ्गा गुण्डाहरूसित सुखभोग गरेर त्यस पुंश्चलीले आनन्दपूर्वक धेरै धनको सञ्चय गरी ॥५-८॥

यस्तै केही समयपछि त्यो सुन्दर आँखीभौँ भएकी चतुरी बुढी जर्जर भइसकेकी, रोगले गाँज्यो, चोरहरूले धन पनि चोरिदिए, अति पीडा पाउन लागी। पेटपालन गर्न कौडीभर कमाउन न सकेर भिक्षुकी भइकन घर घर घुम्न थाली। जराजर्जर शरीरले अनेक यातना भोगेर नेपालदेशलाई छोडेर त्यो गण्डकीतटमा आई। अलिदिन अति दुःखले त्यहाँ काटेर त्यो फेरि उत्तरतिर भयङ्कर वनमा रुखमुनि आएर बसी। त्यसै बेला दैवयोगले एउटा बाघ आयो, त्यस बूढी मानुषीलाई देखेर मासुका आशले चिथोरी दियो ॥६-१३॥

जब त्यस बाघका प्रहारले त्यो मरी, यमदूतहरूले पकडेर यमपुरतिर लगे। तब भाग्यवश त्यसको बाघले खाएर छाडेको एउटा हाडको टुक्रा टिपेर कुनै गिद्ध आकाशमा उड्यो। जाँदा जाँदा दुर्लभपर्वतमा पुगेर ज्वालाक्षेत्रमा नंग्राले र चुच्चा चिथरेर मज्जासँग खान लाग्यो। त्यस गिद्धका मुखबाट गिरेर अलिकति मासुहाड नसा आदि ज्वालामा परेर क्षणभरमा भस्म भो। त्यसैबेला त्यो यमदूतहरूले लगेकी असती तुरन्त विमानमा चढेर विष्णुदूतहरूले स्वागत गरिएकी दिव्य शरीरले विष्णुका भवनमा गई। हे मुनि ! ज्वालाक्षेत्रको माहात्म्य यस्तो परम अद्भुत छ जान ॥१४-१९॥

अगस्त्य सोद्धछन् – देवताहरूलाई पनि दुर्लभ ज्वालाक्षेत्रको पुण्यदायक अतुल माहात्म्य सुन्न पाएँ धन्य रहेछु। अब मलाई यो सुनाउनुहोस् कि, ज्वालाक्षेत्रमा गएर स्नान गर्दा ज्वालामा हवन गर्दा, पूजन गर्दा,श्राद्ध दानादि गर्दा एवं अन्य जप, तप, ध्यान, पाठ आदि पुण्य कर्म गर्दा मनुष्यहरूले कस्तो फल पाउछन् ? कुन २ पाप नष्ट हुन्छन् ? हे प्रभो ! मलाई यसमा संशय छ ॥२०-२२॥

कुमार भन्छन् – हे अगस्त्य ! वह्निक्षेत्रको पुण्यदायक पापनाशक सबै माहात्म्य अब म तिमीलाई विस्तारसँग भन्छु। हे तपोधन ! ब्रह्महत्या, स्त्रीहत्या, बालहत्या र सुरापान गर्ने काशीमा मुक्त हुन्छन्। ती सब पापी यस ज्वालाक्षेत्रमा पनि मुक्त हुन्छन्। काशीभन्दा पनि दशगुणा महापुण्यदायक यो पावकक्षेत्र महापापनाशक छ, यो कुरा जान। अन्नकूट, तुलाकूट, कन्या,

भृत्य, गाइहरू, सुवर्ण, दही, दुध, घिउ, नुन, वस्त्र, भाँडा, अर्काको खेत, परस्त्री र ब्रह्मस्व आदि हरण गरेर, गोमांसभक्षण गरेर भएका सबै पाप तत्काल पावकक्षेत्रमा पुग्नासाथ विलीन हुन्छन्, यसमा सन्देह गर्न हुँदैन यो तिमीलाई सत्य भनिरहेछु ॥२३-२९॥

जस्तै अग्निमा पोलेको सुन निर्मल हुन्छ, त्यस्तै ज्वालाको स्पर्शमात्र गर्नाले पातकी जन पवित्र हुन्छ। जस्तो दीप्त सूर्य, अमृतपूर्ण चन्द्रमा र शुद्ध स्फटिक मणि जस्तो हुन्छ, त्यस्तै मानिस देखिन्छ। नित्य ज्वालाक्षेत्रमा निवास गर्ने तथा ज्वालाको पूजा गर्ने ती मनुष्य धन्य छन् र देवताहरूका पनि पूज्य छन्। ब्राह्मण, क्षत्रिय, वैश्य, शूद्र, चाण्डाल, जातिहरू द्विखुट्टे, चारखुट्टे, कमिला, कीरा, पतङ्ग, उद्भिज, जलज, अण्डज, जरायुज आदि ती सबै पावकक्षेत्रमा आएर मुक्त हुन्छन्। ती प्राणी कर्मभोगार्थ ब्रह्मलोक शिवलोकमा गएर कल्पान्तपर्यन्त सुख भोग्छन् ॥३०-३५॥

तृतीय अध्याय समाप्त।

# चतुर्थोऽध्यायः

स्कन्द उवाच

इदं तीर्थं महापुण्यं भुक्तिमुक्तिप्रदायकम्। सेव्यं ब्रह्ममहेशाद्यैर्यक्षविद्याधरोरगैः ॥१॥
सुराऽसुरा नरा नागा ह्यन्ये च स्थिरजङ्गमाः। पञ्चक्रोशात्मके ह्यस्मिन् क्षेत्रे तिष्ठन्ति पावके ॥२॥
मङ्गलध्वनिनादेन पटहैर्भेरिमर्दलैः। वाचालकिन्नरीवीणातुम्बुरीशंखनिःस्वनैः ॥३॥
कुंकुमाद्यैः सुगन्धैश्च श्रीखण्डाद्यैश्च चन्दनैः। गुग्गुलागरुकस्तूरीधूपैर्वस्त्रैर्मनोहरैः ॥४॥
नानाफलसमायुक्तैर्नैवेद्यैर्विविधैरपि। ध्वजचित्रपताकाभिः श्वैतरक्तादिकैस्तथा ॥५॥
अन्यैश्च विविधैर्द्रव्यैर्ज्वालां देवीं सनातनीम्। पूजयन्ति सदा देवाः सगणा भक्तिसंयुताः ॥६॥
एतेन सदृशं क्षेत्रं भूतले नास्ति कुत्रचित्। भोगमोक्षप्रदं पुण्यं रम्यं सर्वसुखास्पदम् ॥७॥
यो यस्य विहितो भावस्तावत्तस्य फलं भवेद्। मूर्खा नरा न जानन्ति तस्य भक्तिक्रियाक्रमम् ॥८॥
मकरस्थे दिवानाथे विशेषेण महामुने। तिष्ठन्ति त्रिदशाः सर्वे क्षेत्रेऽस्मिन् वह्निसंज्ञिने ॥९॥
तस्मान्माघे प्रकर्तव्या ज्वालादेव्या विशेषतः। होमार्चनादिकाः सर्वा क्रिया भक्तिपुरःसरम् ॥१०॥
पूजितास्त्रिदशास्तैस्तु पूजितो यैर्हुताशनः। अनन्तपुण्यमादाय ते यान्ति परमं पदम् ॥११॥
न तेषां पुनरावृत्तिः स्वर्गलोकात् कदाचन। प्रभावाद्वह्निदेवस्य कुम्भयोने न संशयः ॥१२॥
जनानामुपकाराय कलिमध्ये प्रकाशितम्। माहात्म्यमस्य क्षेत्रस्य गुह्यं च परमाद्भुतम् ॥१३॥
पञ्चसाहस्रसंख्याता ज्वलन्ति प्रत्यहं मुने। ज्वालाः कलियुगे विप्र प्रत्यक्षं तत्र सर्वतः ॥१४॥
नवद्वीपसमायुक्ते भूखण्डेऽस्मिन्महामुने। ईदृशो ज्वलमानोऽग्निर्दृश्यते नहि कुत्रचित् ॥१५॥
सत्यात्मा च शुचिर्दक्षो देवद्विजनिषेवकः। ब्रह्मचारी सदा पुण्यः पूजयेच्च हुताशनम् ॥१६॥
अन्येऽपि ये नरा भक्ताः पूजयन्ति हविर्भुजम्। तेऽपि तत्पुण्यसम्पूता यान्त्येव परमं पदम् ॥१७॥
अधमाः कृमयश्चैव पतङ्गाश्च सरीसृपाः। सर्वेऽपि पावकक्षेत्रं प्राप्य यान्ति परां गतिम् ॥१८॥
पृथिव्यां व्यक्तरूपेण ज्वलमाने हुताशने। श्राद्धं दानं हुतं प्रायश्चित्तं चाक्षयपुण्यदम् ॥१९॥
सुप्रदीप्तमिदं क्षेत्रं पृथिव्यां पापनाशनम्। तीर्थानामुत्तमं तीर्थं संसारभयनाशनम् ॥२०॥
पितृणामुद्धतिकरं कलेरेकोत्तरैः सह। होमदानावगाहाद्यैः पापसंशुद्धिहेतुकम् ॥२१॥
यो नरः पूजयेदत्र देवान् विप्रान् पितृनपि। स मोदते चिरं स्वर्गं यावदिन्द्राश्चतुर्दश ॥२२॥
दीनो हीनस्तथास्वस्थो व्याधिभिः पीडितोऽपि वा। निवसन् पावकक्षेत्रे मृतो येनाऽपि कर्मणा ॥२३॥
आचन्द्रतारकं स्वर्गभोगान् भुक्त्वा सुदुर्लभान्। क्षीणे पुण्ये पुनर्जन्म प्राप्नोति विमले कुले ॥२४॥
इदं पुराणं परमं गुह्यं पापहरं शुभम्। अभक्ताय न दातव्यं दातव्यं धार्मिकाय च ॥२५॥
ये शृण्वन्ति सदा भक्त्या पठन्ति परमादरात्। तेषां यान्त्येव पितरः स्वर्गं सम्यक् फलं भवेत् ॥२६॥
अश्वमेधशतं चैव राजसूयसहस्रकम्। कृतं तेन विजानीयाद्येन सन्तर्पितोऽनलः ॥२७॥
गवां कोटिप्रदानस्य पृथ्वीदानस्य यत् फलम्। पुराणश्रवणेनैव प्राप्यते भुवि मानवैः ॥२८॥

अत्रेरितेषु तीर्थेषु स्नानं कृत्वा विशेषतः। पुराणं शृणुयाच्चैतन्नरो भक्त्या समाहितः ॥२९॥
तेन तस्य भवेद्यात्रा शुभमाफलदायिनी। भुक्तिमुक्तिप्रदा शश्वद् माहपातकनासिनी ॥३०॥
वैश्वानरपुराणं हि वह्निमाहात्म्यसूचकम्। सर्वशास्त्रेषु मुनिभिर्गुह्यत्वेन निरुपितम् ॥३१॥
कथितं ते मुने स्नेहाद् मयेदं परमार्थदम्। सेवस्व भक्तिभावेन क्षेत्रं पावकसंज्ञितम् ॥३२॥
शृणु वक्ष्यामि च पुनर्व्यक्ताव्यक्तस्वरूपतः। विद्यन्ते यानि तीर्थानि तत्र पापहराणि च ॥३३॥
द्वयोः पर्वतयोर्मध्ये वर्तते चोत्तरा नदी। तस्यां वै स्नानमात्रेण कुलानां सप्त चोद्धरेत् ॥३४॥
तस्या दक्षिणदिग्भागे सिद्धेश्वरगिरिर्महान्। यस्य दर्शनमात्रेण जायन्ते सर्वसिद्धयः ॥३५॥
तन्मध्ये यानि तीर्थानि या च पुण्यजला नदी। तत्र स्नानार्चनाद्यैश्च पुनर्जन्म न विद्यते ॥३६॥
श्राद्धदानादिकं कृत्वा तर्पयित्वा हुताशनम्। भक्त्या चाराध्यदेवांश्च लभ्यते वाञ्छितं फलम् ॥३७॥
ततः प्राच्यां च यच्चैवं लिङ्गं परमशोभनम्। दृश्यते मुनिशार्दूल पूजयेत्तद्विधानतः ॥३८॥
कोटियज्ञफलं तेन मनुष्याणां च दुर्लभम्। भुक्तिमुक्तिफलोपेतं सर्वाशुभविनाशनम् ॥३९॥
तत्रैव क्षेत्रपालं च दृष्ट्वा संपूज्य यत्नतः। कोटितीर्थफलं सद्यो मानवैः प्राप्यते तदा ॥४०॥
अग्नेर्दक्षिणदिग्भागे धर्मब्रह्मशिले ततः। कर्षरीसम्भले चैव भृगुतीर्थञ्च पश्चिमे ॥४१॥
तेषां स्मरणमात्रेण सहस्रकुलमुद्धरेत्। तत्रैव संस्थाः गङ्गा च यमुना च महानदी ॥४२॥
तत्र श्राद्धं प्रकुर्वीत पितृणां मोक्षहेतुकम्। मातृवंशे मृता ये च पितृवंशे तथैव च ॥४३॥
यान्ति ते स्वर्गतिं विप्र पूजयित्वा हुताशनम्। कृत्वा पापान्यशेषाणि निरये पतिता अपि ॥४४॥
ततस्तु पश्चिमे भागे पादुकायाश्च चोत्तरे। हंसतीर्थं महापुण्यं विद्यते पापनाशनम् ॥४५॥
तस्मिन् श्राद्धं प्रकुर्वीत स्नायाद्दानानि दापयेत्। गच्छन्ति पितरस्तेन प्राप्यते वाञ्छितं फलम् ॥४६॥
दृश्यते शतसाहस्रं ज्योतिषां विन्दुसञ्चयम्। तत्पार्श्वे संस्थितं विश्वग् व्यक्तं चाव्यक्तमेव च ॥४७॥
मिष्टान्नैर्ब्राह्मणांस्तत्र भोजयेन्मनुजो यदि। ब्रह्महत्यागुरुद्रोहस्वामिद्रोहादिकैस्तथा ॥४८॥
पातकं सञ्चितं यद्यत्तत्सर्वं तस्य नश्यति। सत्यं ब्रवीमि ते विप्र नान्यथा मम भाषितम् ॥४९॥

इति श्रीस्कन्दपुराणोक्तहिमवत्खण्डान्तर्गतज्वालामाहात्म्ये चतुर्थोऽध्यायः ॥४॥

---

कुमार भन्छन् – भुक्तिमुक्तिदायक यो महापवित्र तीर्थ ब्रह्मा, विष्णु, महेश्वर, यक्ष, विद्याधर, गन्धर्व, नागहरूको सेव्य छ। सुर, असुर, नर, नाग तथा अन्य स्थावर जङ्गमहरू वैश्वानरका पञ्चकोशी क्षेत्रमा निवास गर्छन्। गणपरिवारसहित देवताहरू भुक्तियुक्त भएर मङ्गलध्वनिनाद ढोल, दमाहा, मादल, वाचाल किन्नरी वीणा, तमुरा, शंखनाद, कुंकुम आदि सुगन्ध, श्रीखण्ड आदि चन्दन, गोकुल, अगर, कस्तूरी आदि धूप, मनोहर वस्त्र, नाना प्रकारका फलसहित नैवेद्य, सेता, राता आदि ध्वजा चित्रपट पताका एवं अन्य विविध द्रव्यहरूले सनातनी ज्वालादेवीको सदा पूजा गर्छन् ॥१-६॥

यस ज्वालाक्षेत्रसमानक्षेत्र भूमण्डलमा कतै छैन, यो क्षेत्र भोगमोक्षदाता, पुण्यमय रमणीय र सर्वसुखसम्पन्न। जस्को जो भाव छ, त्यसलाई त्यति फल हुन्छ, मूर्ख मनुष्य ज्वालाक्षेत्रको भक्ति र क्रियाक्रम जान्दैनन्। हे महामुनि ! विशेष गरेर दिवानाथ सूर्य मकरराशिमा बसेमा यस वह्निसंज्ञित ज्वालाक्षेत्र पञ्चकोशीमा सबै देवी-देवता वास गर्छन्। त्यसैले माघमा विशेष गरेर ज्वालादेवीको हवन, पूजन आदि सबै क्रिया भक्तिपूर्वक गर्नुपर्छ ॥७-१०॥

जसले हुताशनको पूजा गरे तिनले समस्त देवताको पूजा गरिसके, ती मनुष्य अनन्त पुण्य लिएर परमपदमा जान्छन्। हे कुम्भयोनि ! अग्निदेवको प्रभावले स्वर्गलोकदेखि तिनको पुनरावृत्ति कदापि छैन, यसमा संशय छैन। यस ज्वालाक्षेत्रको गोप्य र परम अद्भुत माहात्म्य कलिमा जनताको उपकारार्थ प्रकाशित गरियो। हे मुनि ! हे विप्र ! ज्वालाक्षेत्रमा सर्वत्र कलियुगमा पनि प्रतिदिन प्रत्यक्ष पाँच हजार ज्वाला जल्छन्। हे महामुनि ! नवद्वीप भएको यस भूखण्डमा यस्तो निरन्तर जाज्वल्यमान अग्नि कतै देखिँदैन ॥११-१५॥

सत्यात्मा, शुचि, दक्ष, देवद्विजसेवक, ब्रह्मचारी र सदा पवित्र चरित्रभएकाले हुताशनको पूजा गरोस्। अरू पनि जो भक्त नर ज्वालाको पूजा गर्छन्, ती पनि त्यस पुण्यले पवित्र भएर परमपद पाउँछन्। अधम कृमि, कीटपतङ्ग, गडेउला, सर्प आदि सबै जन्तु पावकक्षेत्रमा आएर परमगति पाउछन्। पृथ्वीमा व्यक्तरूपले जाज्वल्यमान अग्निमा श्राद्ध, दान, होम र प्रायश्चित्त अक्षयपुण्यप्रद छन्। पृथ्वीमा देदीप्यमान यो ज्वालाक्षेत्र पापनाशक, संसारको भयनाशक र तीर्थमध्ये उत्तम तीर्थ

छ। यो क्षेत्र एकोत्तरशत कुलका साथ पितृहरूको उद्धार गर्ने र होम दान स्नानादिले पापशोधक छ। जो मनुष्य यहाँ देव, विप्र, पितृहरूको पूजन गर्छ, त्यो १४ इन्द्र भएसम्म स्वर्गमा आनन्द गर्छ ॥१६-२२॥

दीन, हीन, रोगी,अस्वस्थ जुन कर्मले पनि ज्वालाक्षेत्रमा बसेर मऱ्यो भने चन्द्रतारा रहुञ्जेल दुर्लभ स्वर्गका भोग भोगेर पुण्य क्षीण भएपछि विमल कुलमा पुनर्जन्म पाउँछ। यो पुराण परमगुह्य, पापहर र शुभ छ, अभक्तलाई नदिनु धार्मिकलाई दिनु। जो सदा भक्तिले सुन्छन् र जो परम आदरले पठन पाठन गर्छन्, तिनका पितृहरू स्वर्ग जान्छन् र असल फल हुन्छ। जसले ज्वालाको तर्पण गऱ्यो, त्यसले सय अश्वमेध र हजार राजसूय यज्ञ गऱ्यो भनी जान्नू ॥२३-२७॥

कोटि गाइदानको र पृथ्वीदानको जो फल हुन्छ त्यो फल पृथ्वीमा यो पुराण सुन्नाले नै मानिस पाउँछन्। ज्वालाक्षेत्रमा भनिएका तीर्थहरूमा स्नान गरी विशेष गरेर मानिसले यो पुराण भक्तिले समाहित भएर सुनोस्। यसो गर्नाले त्यसको यात्रा शुभफलदायक, भुक्तिमुक्तिदायक र सदा महापातकनाशक हुन्छ। यो वैश्वानरपुराण अग्निको माहात्म्यसूचक छ र सबै शास्त्रहरूमा मुनिहरूले गुह्यरूपले निरूपण गरेका छन्। हे मुनि ! तिम्रा स्नेहले मैले यो परमार्थदायक वैश्वानरपुराणको कथा भनें, भक्तिभावले ज्वालाक्षेत्रको सेवन गर ॥२८-३२॥

सुन, पावकक्षेत्रमा पापहर गुप्त प्रकट जति तीर्थ छन्, तिनलाई फेरि भन्छु। दुई पर्वतका माझमा उत्तरवाहिनी नदी छ, त्यसमा स्नानमात्र गर्नाले सात कुलको उद्धार गर्छ। उत्तरगङ्गाका दक्षिणदिशामा महान् सिद्धेश्वर पर्वत छ, त्यसको दर्शनमात्रले सर्वसिद्धिहरू हुन्छन्। त्यस सिद्धाचलमा जति तीर्थ छन्, जति पुण्यजला नदी छन्, तिनमा स्नान, पूजन, जप, ध्यानादि गर्नाले पुनर्जन्म हुँदैन। श्राद्धदानादि गरी ज्वालालाई तृप्त गरी भक्तिले देवताहरूको आराधना गर्नाले वाञ्छित फल पाइन्छ ॥३३-३७॥

त्यहाँदेखि पूर्वमा जो परम सुन्दर शिवलिङ्ग देखिन्छ, हे मुनिशार्दूल ! त्यसको विधिविधानले पूजा गर्नुपर्छ। त्यसले सबै अशुभको नाशक भुक्तिमुक्तिफलसहित कोटियज्ञको फल मनुष्यहरूलाई दुर्लभ छैन। त्यसै ठाउँमा क्षेत्रपालको प्रयत्नले पूजन गर्नाले मानवले कोटितीर्थको फल तत्काल पाउँछन्। ज्वालाका दक्षिणमा धर्मशिला र ब्रह्मशिला छन् कर्षरी तीर्थ सम्भलतीर्थ र पश्चिममा भृगुतीर्थ छ। तिनको स्मरणमात्रले सहस्र कुलको उद्धार हुन्छ, त्यहीं गङ्गा र यमुना महानदी छन्। त्यस तीर्थमा पितृहरूका मोक्षनिमित्त श्राद्ध गरोस्, मातृवंशमा र पितृवंशमा जो जो मरेका छन्, हे विप्र ! ज्वालाको पूजा गर्नाले अशेष पाप गरेर नरकमा भए पनि ती सबैले स्वर्गति प्राप्त गर्छन् ॥४३-४४॥

गङ्गा-यमुनाका पश्चिमभागमा पादुकाज्वालाका उत्तरमा पापनाशक महापुण्य हंसतीर्थ छ। त्यस हंसतीर्थमा स्नान, दान,श्राद्ध गरोस्, त्यसले पितृहरू स्वर्ग जान्छन् र वाञ्छित फल पनि पाइन्छ। त्यस हंसतीर्थका पासमा चारैतिर गुप्त र प्रकट सैकडौं हजारौं ज्योतिको विन्दुसञ्चय देखिन्छ। त्यस ठाउँमा ब्राह्मणलाई मिठाइ खुवाएमामानिसका ब्रह्महत्या, गुरुद्रोह, स्वामिद्रोह आदिले साँचेको सबै पाप नष्ट हुन्छ। हे विप्र ! तिमीलाई सत्य भन्दछु, मेरो वचन अन्यथा छैन ॥४६-४९॥

चतुर्थाध्याय समाप्त।

## पञ्चमोऽध्यायः

अगस्त्य उवाच

किं सत्यं किं फलं चैव कश्च पूजाविधिक्रमः। ज्वालादेव्या मम ब्रूहि भगवन् विस्तरादिह ॥१॥

स्कन्द उवाच

सत्यं सत्यं प्रवक्ष्यामि वैश्वानरविधिं क्रमात्। कृताधिवासनं तत्र पूजयेत्पावकं नरः ॥२॥
गुप्तानां चैव सर्वेषां प्रत्यक्षाणां च कर्मणाम्। द्रष्टा कालाग्निरुद्रस्तु ज्वालारूपी सुराननः ॥३॥
नराः सुकृतिनस्तत्र ज्वालां देवीं सनातनीम्। पश्यन्ति गुप्तरूपेण स्थितां नासुकृती क्वचित् ॥४॥
ईश्वरं पूजयेत्तत्र मातृकागणसंयुतम्। लक्षजापः प्रकर्तव्यो होमं कुर्याच्छतांशकम् ॥५॥
आधारे चैवमोङ्कारं नकारं हृदये तथा। मोकारं वदने न्यस्य वैकारं दक्षकन्धरे ॥६॥
वामस्कन्धे श्वाक्षरं तु नकारं बाहुमूलके। राक्षरं हृदिमध्ये च यकारं कण्ठकूपके ॥७॥
अग्निन्दूतेतिमन्त्रेण वैश्वानरो न ऊतये। धामच्छदग्निरित्यादिमन्त्रैः कुर्यात्प्रदक्षिणा ॥८॥
ततो होमं प्रकुर्वीत विधिना घृतपायसैः। शुद्धदेहस्ततो भूत्वा पिबेत्तस्य रसायनम् ॥९॥
अश्वत्थदलमध्यस्थं कृत्वा च पलसम्मितम्। रसायनं सोदकन्तु पिबेच्चैव समन्त्रकम् ॥१०॥
नैवेद्यं देवताभ्यश्च दत्वा हुत्वा धनञ्जये। शुचिः समाहितो भूत्वा सघृतं मधुसंयुतम् ॥११॥

प्रगृह्याश्वत्थपत्रस्थं पलमेकं भक्षयेत्। द्वयोश्च कुण्डयोर्मध्ये स्थित्वा धर्मशिलान्तिकम् ॥१२॥
रसायनस्य पाने तु प्रणवेन समन्वितम्। प्रजपेद्वह्निगायत्रीं स्मरन् वह्निमयं महः ॥१३॥
सोमपानेन सदृशं वैश्वानरमुखाश्रितम्। पीत्वा प्रमुच्यते सद्यः पातकैरूपपातकैः ॥१४॥
अश्वमेधाधिकं पुण्यं मनुष्याणां प्रजायते। रसायनस्य पानेन नात्र कार्या विचारणा ॥१५॥
आयुष्यकामः सहविर्धनकामो मधुस्रुतम्॥ मृतवत्सा गर्भहीना काकबन्ध्याऽरजस्विनी ॥१६॥
क्षीरेण सह पीत्वा च सर्वदोषैर्विमुच्यते। बन्ध्या प्रसूयते पुत्रं मृतवत्सा प्रजीविनी ॥१७॥
दुर्भगा सुभगा चैव भवेत्तत्पानतो ध्रुवम्। रोगी त्वामलकैः सार्द्धं पीत्वा रोगैः प्रमुच्यते ॥१८॥
स्नानमात्रेण रोगास्तु नरदेहसमुद्भवाः। सद्य एव विश्यन्ति पातकैर्विविधैः सह ॥१९॥
रसायनस्य पानेन स्नानाच्चैव विशेषतः ॥२०॥
एवं रसायनं प्रोक्तं सर्ववाञ्छितसिद्धिदम्। तव स्नेहान्मुने सत्यं नान्यथा मम भाषितम् ॥२१॥
ज्वालां कालाग्निरुद्रीयां पश्यन् पीतामृतो जनः। मुच्यते सर्वपापेभ्यः सद्य एव न संशयः ॥२२॥
ततः कृताञ्जलिर्भूत्वा ज्वालां वह्नेः सनातनीम्। स्तुवीत परया भक्त्या वह्निमन्त्रैस्तथा परैः ॥२३॥
वैदिकैस्तान्त्रिकैश्चैव बद्धपद्मासनो नरः। पावकस्य च प्रीत्यर्थं सर्वदेवमयस्य तु ॥२४॥
भगवती भवबन्धव्यापृतं ज्ञानशून्यं । विविधविषयचिन्ताजर्ज्जरं तापतप्तम्।
अतनुतनुवनोत्थं शुष्कहृत्काष्ठमेतत्। तव विमलशिखाग्ने ज्वालिके सञ्जुहोमि ॥२५॥
सपदि कलुषवृन्दं जन्मजन्मान्तरोत्थं। इदिह मम शरीरे विद्यते देवि सर्वम्।
दह दह कुरु सद्यो भस्मसात्तत्समन्तान्निजविमलशिखाभिः सर्व्वतो विस्तृताभिः ॥२६॥
हरनिटिलनिवासे दिव्यदीप्तिप्रकाशे भगवति मयि दासे चारुहासे प्रसीद।
नहि जननि जगत्यां लक्षये व्यक्तरूपां कलुषदहनदीक्षाबद्धकक्षां त्वदन्याम् ॥२७॥
त्वमसि शमनरूपा देवि कल्पावसाने मदनदहनकाले शाम्भवी दृक्कराला।
दशरथसुतसत्रे त्वं सवित्रीप्सितस्य नहि तव परमार्थं वेत्ति रूपस्य कोऽपि ॥२८॥
कलुषनिवहहन्त्रीं दुर्ल्लभाद्रौ वहन्तीं निजरुचिरशिखाभिः सर्व्वदोषान्धमन्तीम्।
सततशिशिरनीरप्रोच्चधाराभिरारात् गिरिगहनगुहाभ्यो निःसृतां त्वां नमामि ॥२९॥
यः श्लोकपञ्चकमिदं शिखिनः समीपे स्थित्वा च दुर्लभगिरौ प्रयतः पठेत।
तस्य प्रसीदतितरां ज्वलनस्य शक्तिर्ज्वालात्मिका भगवती भवभीतिहन्त्री ॥३०॥
विद्यां श्रियं विपुलसौख्यमनन्तकीर्तिं सौभाग्यसन्ततिसुखं चिरजीवितां च।
तस्मै ददाति सततं स्तुतिभिः प्रसन्ना भक्ताय भव्यनिलयाय निजाश्रिताय ॥३१॥
भूतप्रेतपिशाचेभ्यो दुर्ग्रहेभ्यस्तथैव च। न भयं विद्यते तस्य ज्वालां यस्तौति भक्तितः ॥३२॥
दुर्विनीताय दुष्टाय नास्तिकाय शठाय च। न देयं स्तोत्रमेतद्धि ज्वालादेव्याः कदाचन ॥३३॥

स्कन्द उवाच

एवं स्तुत्वा तदा देवो ज्वालामीश्वरदृग्भवाम्। क्षमाप्य च प्रणामाद्यैस्ततोऽन्यत्र व्रजेच्छुचिः ॥३४॥
ब्रह्मकुण्डोर्ध्वभागे च श्वेतद्वीपप्रतिष्ठितम्। तस्य मध्ये चास्ति पुण्या नदी रुद्रावती शुभा ॥३५॥
तस्य चापरभागे च नदी पद्मावतीत्यपि। द्वयोश्च सङ्गमे तत्र चास्ति प्रेतशिलाभिधा ॥३६॥
तस्यां तिलान् सक्तुमिश्रान् कृत्वा प्रेतत्वमुक्तये। अन्तर्जले नरः स्नात्वा कुर्यात्छ्राद्धं विशेषतः ॥३७॥
तस्यैव सफलं कर्म तस्यैव सफलाः क्रियाः। तस्यैव सफलं राज्यं तस्यैव सफलं धनम् ॥३८॥
कुलानां शतमुद्धृत्य दश पूर्वान् दशावरान्। कुरुते जन्मसाफल्यं तस्यैव सफलं तपः ॥३९॥
यः करोति नमस्कारं कालाग्नेर्दर्शनं तथा। सर्वपापविशुद्धात्मा शिवलोकं स गच्छति ॥४०॥
रुद्रपद्मावतीनद्योर्मध्ये चानलदेवता। तत्र श्राद्धं प्रकुर्वीत गयाश्राद्धाधिकं फलम् ॥४१॥
रुद्रपद्मावतीतीर्थसंनिधौ दक्षिणे तटे। नासाचक्षुर्ललाटं च ज्वालादेव्याः प्रतिष्ठितम् ॥४२॥
तेषां दर्शनमात्रेण मुच्यते सर्वपातकैः। तत्र होमे कृते सद्यो गोसहस्रफलं लभेत् ॥४३॥

तस्य पार्श्वे तथा श्रोत्रं तत्रोपरि शिला तथा। ज्वालादेव्या विजानीयाद्धोमं दानं च कारयेत् ॥४४॥
तत्रै माधवो नाम दृश्यते पर्वतो महान्। तन्मध्ये दृश्यते पुण्या मालिकाख्या नदी शुभा ॥४५॥
तस्यां हुत्वा समभ्यर्च्य स्नात्वा चैव विशेषतः। मनोवाक्कायजं सर्वं निर्दहेत्पातकं नरः ॥४६॥
तस्य पूर्वे परं पुण्यं कोटितीर्थं च विद्यते। तस्मिन् प्रदक्षिणीकृत्य कोटियज्ञफलं भवेत् ॥४७॥
दुग्धेश्वरं महालिङ्गं कोटितीर्थस्य दक्षिणे। त्रिवेणीमध्यतस्तत्र दृश्यते पापनाशनम् ॥४८॥
तं नत्वाऽभ्यर्च्य विधिवद् दुग्धं चापि समर्पयेत्। तेन तृप्यन्ति पितरो देवाश्च मुनिपुङ्गव ॥४९॥
कोटितीर्थस्य पार्श्वे तु सिद्धगङ्गा प्रदृश्यते। तत्र स्नानेन विधिवच्चिन्तितं फलमश्नुते ॥५०॥
तत्रैव विधिना श्राद्धं पिण्डदानपुरस्सरम्। स्वर्णवस्त्रान्नदानं च तदनन्तगुणं भवेत् ॥५१॥
कोटितीर्थस्य मध्ये यच्छिबलिङ्गं प्रतिष्ठितम्। तस्य कुर्याद्विशेषेण पूजां भक्तिसमन्वितः ॥५२॥
धूपैर्दीपैश्च नैवेद्यैः पुष्पैश्च विविधैरपि। वस्त्रध्वजान्नदानैश्च पुष्पैश्च प्रदक्षिणविधानतः ॥५३॥
पश्चादर्घ्यञ्च दत्वा तु नमस्कृत्य यथाविधि। भोजयेद् ब्राह्मणांश्चैव पायसैर्घृतमोदकैः ॥५४॥
ततः सुरान् पितॄंश्चैव तर्पयित्वा समन्ततः। श्रुत्वा माहात्म्यमेतच्च वाञ्छितार्थं लभेन्नरः ॥५५॥
त्रयस्त्रिंशत्कोटिदेवाः सिद्धगन्धर्वसंयुताः। तिष्ठन्ति सर्वदा चास्मिन् कालाग्नेरत्र मण्डले ॥५६॥

इति श्रीस्कन्दपुराणान्तर्गतहिमवत्खण्डोक्तज्वालामाहात्म्ये पञ्चमोऽध्यायः ॥५॥

---

अगस्त्य सोद्धछन् - भगवन् सत्य के हो ? फल के हो ? र ज्वालादेवीको पूजाविधि क्रम कुन हो ? मलाई यहाँ विस्तारसँग भन्नुहोस् ॥१॥

कार्त्तिकेय भन्नुहुन्छ - वैश्वानरविधिबारे क्रमशः सत्य सत्य भन्दछु, ज्वालामा अधिवासन गरेर मानिसले ज्वालाको पूजा गरोस्। गुप्त-प्रकट समस्त कर्मका द्रष्टा, देवताका मुख ज्वालारूपी कालाग्निरुद्र प्रत्यक्ष छन्। ज्वालाक्षेत्रमा गुप्तरूपले रहेकी सनातनी ज्वालादेवीलाई पुण्यात्मा मानिसले देख्छन्, अधर्मीले देख्दैन। ज्वालामा मातृगणसहित ईश्वरको पूजा, लक्ष-जप र शतांश हवन गर्नुपर्छ ॥२-५॥

शक्तिं वह्निं स्रुक्स्रुवौ सव्यहस्तैर्वामैर्हस्तैस्तोमरं तालवृन्तम्। सर्पिःपूर्णः तप्तसौवर्णपात्रं शश्वद् ध्यायेत् सप्तजिह्वां दधानाम् ॥१॥

दाहिने हातले शक्ति, स्रुक् र सुरो तथाबायाँ हातले तोमर, तालवृन्त, घृतपूर्ण तप्तसुवर्णपात्र धारण गरेका सात जिह्वा भएका अग्निको सदा ध्यान गरोस् ॥१॥

जपमन्त्रः - ॐ ऐं ह्रीं नमो वैश्वानराय। ॐ क्रां क्रीं क्रूं क्रैं क्रौं क्रः - अनेन षडङ्गन्यासः ॥

रक्षामन्त्रः -

जपमन्त्र - ॐ ऐं ह्रीं वैश्वानरलाई नमस्कार। ॐ क्रां क्रीं क्रूं क्रैं क्रौं क्रः - यस मन्त्रले षडङ्गन्यास गर्नू।

रक्षामन्त्र - मूलाधार चक्रमा ॐकारलाई, नकारलाई हृदयमा तथा मोकारलाई मुखमा, वैकारलाई दाहिने कन्धामा, श्वाकारलाई बायाँ कन्धामा, नकारलाई बाहुमूलमा, रा अक्षरलाई हृदयको मध्यमा र यकारलाई कण्ठकूपमा, न्यास गर्नुपर्छ ॥६-७॥

ततो वैश्वानरगायत्री - ॐ वैश्वानराय विद्महे सप्तजिह्वाय धीमहि। तन्नोऽग्निः प्रचोदयात्।

वैश्वानरगायत्रीको जप गरोस् - ॐ वैश्वानरलाई जान्दछौँ, सात जिह्वा भएका जातवेदाको ध्यान गर्दछौँ। त्यसबाट अग्निले हामीलाई सत्कर्ममा लगाऊन् ॥ अग्निदूतलाई यस अग्निन्दूत इत्यादि मन्त्रले वैश्वानर हाम्रो रक्षा गर्नका लागि अग्निको प्रार्थना गरी धामच्छदग्निः इत्यादि मन्त्रले अग्निको प्रदक्षिणा गर्नुपर्छ। तदनन्तर विधिपूर्वक घृत-पायसले होम गरोस्,त्यसपछि शुद्धदेह भएर त्यसको रसायन पान गरोस् ॥८-९॥

एक पल रसायन पिप्पलका पातमा लिएर जलसहित मन्त्र पढेर पान गरोस्। घृत-मधुसहित नैवेद्य देवताहरूलाई दिएर, ज्वालामा हवन गरेर, शुचि-समाहित, भएर एकपल लिएर पिप्पलपत्रमा राखेर दुबै कुण्डका मध्यमा बसेर धर्मशिलानेर नैवेद्य भक्षण गरोस्। रसायनको पान गर्दा ज्वालामय वैश्वानरको ध्यान गर्दै प्रणवसहित अग्निगायत्रीको जप गरोस्। वैश्वानरमुखमा पाकेका सोमपानसमान रसायनको पान गर्नाले तत्काल पातक र उपपातकदेखि मुक्त हुन्छ। रसायनको पान गर्नाले मनुष्यको अश्वमेधभन्दा अधिक पुण्य हुन्छ, यसमा विचार गर्नुपर्दैन। आयुष्मान् हुनु खोज्ने हविसित, धनी हुनखोज्ने महसित, बालक मर्ने, गर्भ नरहने काग जस्तो एक्कै बच्चा हुने, रजस्वला नहुने गाईका दूधसँग रसायन पान गर्नाले समस्त दोषदेखि मुक्त हुन्छ,वन्ध्या छोरो पाउँछे मृतवत्साका बालक बाँच्छन्। रसायनका पानले दुर्भगा पनि निश्चय सुन्दरी हुन्छे, रोगी अमलासित पान गरेर रोगदेखि छुट्छ ॥१०-१८॥

ज्वालारसायनमा स्नानमात्र गर्नाले पनि मनुष्यदेहमा भएका समस्त रोग, विविध पातकहरूसित तत्कालै विनष्ट हुन्छन्। धेरै के भनौं रसायनका पानले र विशेष स्नानले पुनर्जन्म हुँदैन। हे मुनि ! साँच्चै रसायन यस्तो समस्त इच्छासिद्धिदायक छ, तिम्रो स्नेहले भने, मेरो वचन अन्यथा छैन। कालाग्निरुद्रीय ज्वालाको दर्शन गर्ने र अमृतपान गर्ने सबै पापबाट तुरुन्तै छुट्छ, यसमा संशय छैन। त्यसपछि कर जोडेर, पद्मासन बाँधेर मनुष्य सनातनी ज्वालादेवीको परमभक्तिले अग्निमन्त्र तथा वैदिक मन्त्र एवं तान्त्रिक मन्त्र र अन्य मन्त्रहरूले सर्वदेवमय अग्निको प्रीतिका लागि स्तुति गरोस् ॥१९-२४॥

स्तुति- हे भगवति ! हे ज्वाला ! संसारका बन्धनले जकडेको, ज्ञानशून्य विविध विषयका चिन्ताले जर्जर भइसकेको, आध्यात्मिक, आधिदैविक र आधिभौतिक तापहरूले तपेको शरीररूपी वनमा उत्पन्न भएको ठूलो शुकेको हृदयरूपी काष्ठ तपाईंका विमल ज्वालामा राम्रोसँग हवन गर्छु। हे देवी ! जो यहाँ मेरा शरीरमा जन्म-जन्मान्तरको पातकसमूह छ, त्यो सबै छिट्टै जलाएर चारैतिरबाट सर्वत्र फैलिएका आफ्ना निर्मल शिखाले तत्काल भस्मसात् गर्नुहोस् ॥२५-२६॥

हे हरका निधारमा निवास गर्ने ! हे दिव्यदीप्तिले प्रकाशमान ! हे सुन्दर हाँसो भएकी ! हे भगवती ! हे जननि ! म दासमाथि प्रसन्न भई पापलाई भस्म गर्ने दीक्षा लिएर कम्मर कसेकी प्रत्यक्षरूपा तपाईंदेखि अतिरिक्त अरू कसैलाई संसारमा देख्दिनँ। हे देवी ! प्रलयकालमा तिमी महाकालरूप छौ, कामदेवलाई भस्म गर्ने बेलामा तिमी शम्भुकी कराल दृष्टि छौ, दशरथका पुत्रेष्टि यज्ञमा तिमी ईप्सित वरदायक छौ, तिम्रोरूपको परमार्थ कोही पनि जान्दैन। पातक समूहको विनाश गर्ने, दुर्लभाद्रिमा जाज्वल्यमान आफ्ना सुन्दर शिखाले सर्वदोषहरूलाई भस्म पार्ने, निरन्तर शीतल उच्च जलधारासित दूर निकट पर्वतका गहन गुहाहरूबाट निक्लेकी हे ज्वाला ! हजुरलाई नमस्कार गर्छु ॥२७-२९॥

जो मनुष्य संयमपूर्वक दुल्लूशैलमा शिखीका समीपमा बसेर यी पाँच श्लोकको पाठ गर्छ, त्यसमाथि भवभीतिनाशिनी भगवती ज्वालात्मिका अग्निकी शक्ति अत्यन्त प्रसन्न हुन्छन्। निरन्तर स्तुतिहरूले प्रसन्न भएकी ज्वालादेवी आफ्ना शरणमा आएका भव्यनिलय भक्तलाई विद्या, लक्ष्मी, विपुल सुख, अनन्त कीर्ति, सौभाग्य, सन्तानको सुख र चिरञ्जीविता दिन्छिन्। जो भक्तिपूर्वक ज्वालाको स्तुति गर्छ, त्यसलाई भूत, प्रेत, पिशाच, दुर्ग्रहहरूदेखि भय छैन। यो ज्यालादेवीको स्तोत्र दुर्विनीत, दुष्ट, नास्तिक र शठलाई कदाचित् नदिनु ॥३०-३३॥

कुमार भन्छन् - यसप्रकार ईश्वरका दृष्टिबाट उत्पन्न भएकी ज्वालादेवीको स्तुति गरी प्रणामादिले क्षमा मागेर पवित्र भएर पछि अन्यत्र जानू। ब्रह्मकुण्डका ऊर्ध्वभागमा श्वेतद्वीप प्रतिष्ठित छ, त्यसका मध्यमा पुण्य रुद्रावती शुभ नदी छ। त्यसको अर्को भागमा पद्मावती नदी छ, ती दुईका सङ्गममा प्रेतशिला छ। त्रिवेणीमा स्नान गरेर नर प्रेतमुक्तिनिमित्त त्यस प्रेतशिलामा तिल,सातु मिसाएर विशेष श्राद्ध गरोस्। त्यसको कर्म सफल छ, त्यसका क्रिया सफल छन्, त्यसको राज्य सफल छ र त्यसै को धन सफल छ। सय कुलको उद्धार गरेर दश पूर्वज र दश भावी सन्तानको उद्धार गर्छ, त्यसको तपस्या सफल छ र त्यसले जन्म सफल गर्छ। जो कालाग्निको दर्शन र नमस्कार गर्छ, त्यो सबै पापदेखि विशुद्धात्मा भएर शिवलोक जान्छ ॥३४-४०॥

रुद्रावती र पद्मावती नदीका मध्यमा अनल देवता छन्, त्यहाँ श्राद्ध गरोस्। गयाश्राद्ध भन्दा अधिक फल हुन्छ। रुद्रावती र पद्मावती तीर्थका निकट दक्षिणतटमा ज्वालादेवीका नाक, आँखा, ललाट प्रतिष्ठित छन्। तिनको दर्शनमात्रले सबै पापदेखि मुक्त हुन्छ, त्यहाँ हवन गर्नाले तत्काल गोदानको फल हुन्छ। त्यसका पासमा ज्वालादेवीको कान छ, त्यस माथि उपरिशिला छ, त्यहाँ होम, दान गरोस् त्यसै ठाउँमा माधव नामको महापर्वत छ, त्यसका मध्यमा मालिका नामकी शुभ पुण्य नदी रहेको छ ॥४१-४५॥

त्यसमा स्नान, पूजा गरी विशेष होम गरेर मानिस मन, वाणी र शरीरले गरेका सब पापलाई दग्ध गर्छ। त्यसका पूर्वमा परम पवित्र कोटितीर्थ छ, त्यसमा प्रदक्षिणा गरेर कोटियज्ञको फल हुन्छ। कोटितीर्थका दक्षिणमा पापनाशक दुधेश्वर महालिङ्ग त्रिवेणीका मध्यमा देखिन्छ। ती दुग्धेश्वरलाई विधिवत् नमस्कार, पूजा गरी दूध पनि चढावोस्। हे मुनिपुङ्गव ! त्यसले देवता तथा पितृहरू तृप्त हुन्छन्। कोटितीर्थका नजिकै सिद्धगङ्गा देखिन्छ, सिद्धगङ्गामा विधिपूर्वक स्नान गर्नाले चिन्तित फल पाउँछ ॥४६-५०॥

त्यसै सिद्धगङ्गामा विधिवत् श्राद्ध पिण्डदानपूर्वक स्वर्णदान, वस्त्रदान, अन्नदान गर्दा अनन्त गुण हुन्छ। धूप, दीप, नैवेद्य, विविध पुष्प, वस्त्र, ध्वजा, अन्नदान, प्रदक्षिणा विधानले पूजा गर्नुपर्छ। कोटितीर्थका मध्यमा जो शिवलिङ्ग प्रतिष्ठित छ, त्यसको भक्तियुक्त भै विशेष गरेर पूजा गरोस, पछि अर्घ्य दिएर यथाविधि नमस्कार गरी पायस, घृत, लड्डुले ब्राह्मणलाई भोजन गराओस्। तदनन्तर चारैतिरका देवता र पितृहरूको तर्पण गरेर यो ज्वालामाहात्म्य सुनेर मानिस वाञ्छित फल पाउँछ। सिद्ध-गन्धर्वसहित तेत्तिस कोटि देवता सर्वदा यस कालाग्नि मण्डलमा रहन्छन् ॥५१-५६॥

पञ्चमाध्याय समाप्त भयो।

# षष्ठोऽध्यायः

स्कन्द उवाच

अथ यात्राक्रमं वक्ष्ये शृणु चैकाग्रमानसः। यात्रिणामुपकाराय यात्राकाले सुखाय च ॥१॥
सिद्धेश्वरं समभ्यर्च्य दृष्ट्वा च स्वामिकार्तिकम्। विलोक्य पादुकांगुष्ठलीनाभीन्द्रियस्थितिम् ॥२॥
मुखनासिकनेत्राणां स्थानानि च विशेषतः। वेणीप्रेतशिले चैव दृष्ट्वा नत्वा ततः परम् ॥३॥
प्रदक्षिणक्रमेणैव कोटितीर्थं ततो व्रजेत्। तत्र सोमं महेशानं पूजयेद्विधिपूर्वकम् ॥४॥
मालतीसरिति स्नात्वा समभ्यर्च्य च माधवम्। सिद्धासनं समालोक्य पूजयेत्तत्र शङ्करम् ॥५॥
अधिवासनकं कुर्यात्तत्रैव विधिपूर्वकम्। यात्रामेनां तु मुनयो वदन्ति हरिशङ्करीम् ॥६॥
ज्वालाक्षेत्रस्य माहात्म्यं शिवोक्तं हरिसन्निधौ। व्यासाय विष्णुना प्रोक्तं तन्मयात्र प्रकाशितम् ॥७॥
सर्वपापप्रशमनं भुक्तिमुक्तिफलप्रदम्। शृण्वन्ति ये नराश्चैव ते लभन्ते समीहितम् ॥८॥
शान्ताय शुद्धमतये कथनीयं प्रयत्नतः। दुष्टाय शूद्ररूपाय न वक्तव्यं त्वया मुने ॥९॥
पठनाच्छ्रवणादानात्पुस्तकस्य विशेषतः। शिवसायुज्यमाप्नोति नरो भक्तिसमन्वितः ॥१०॥
ज्वालादेवी महापुण्या ज्वालाक्षेत्रं महाद्भुतम्। ज्वालाक्षेत्रस्य स्थानानि सर्वमेतत्सुदुर्लभम् ॥११॥
कोटिजन्मोद्भवं पुण्यं यस्य देहे प्रतिष्ठितम्। स एव पावके ह्यस्मिन् क्षेत्रे प्राप्नोति संस्थितिम् ॥१२॥
नहि स्वल्पेन पुण्येन ज्वालाक्षेत्रस्य दर्शनम्। प्राप्यते मानवैर्लोके सत्यमेतद् ब्रवीम्यहम् ॥१३॥
ये नराः पावके क्षेत्रे प्राप्य जन्म सुदुर्लभम्। सेवन्ते पावकं देवं धन्यास्ते कीर्तिता भुवि ॥१४॥
तस्मात्सर्वैः सदा सेव्यं ज्वालाक्षेत्रं मनोहरम्। आयुरारोग्यदं पुण्यं स्वर्गमोक्षप्रदं तथा ॥१५॥
इत्येवमुक्त्वा सेनानीरगस्त्यं मुनिपुङ्गवम्। विरराम मुनिः सोऽपि तं प्रणम्य प्रहर्षितः ॥१६॥
ज्वालाक्षेत्रं ततो गत्वा समभ्यर्च्य च पावकम्। समाप्य यात्रां विधिवत्प्रीतात्मा स्वाश्रमं ययौ ॥१७॥
इति श्रीस्कन्धपुराणोक्तहिमवत्खण्डान्तर्गतृज्वालामाहात्म्ये कुमाराऽगस्त्य संवादे षष्ठोऽध्यायः ॥६॥
॥ समाप्तमिदं ज्वालामाहात्म्यम् ॥

---

कुमार भन्छन् – हे अगस्त्य ! यात्राकालमा सुख होस् भनेर यात्रीहरूको उपकारका लागि अब यात्राक्रम भन्छु, एकाग्र मनले सुन ॥१॥ सिद्धेश्वरको पूजा गरी स्वामी कार्तिकको दर्शन गरेर पादुका, अङ्गुष्ठ, धुलेश्वर, नाभिस्थान, इन्द्रिय, ज्वालामुख, नासिका, नेत्रका ज्वालाका स्थान, विशेष गरेर त्रिवेणी प्रेतशिलाहरूको दर्शन गरी नमस्कार गरेर अनि प्रदक्षिणाक्रमले नै कोटितीर्थमा गएर त्यहाँ उमासहित महेश्वरको पूजा विधिपूर्वक गरोस् ॥१–४॥

मालती नदीमा स्नान गरी माधवको पूजा गरी सिद्धासनको दर्शन गरेर सिद्धासनमा शिवको पूजा गरोस्। त्यस सिद्धासनमा विधिपूर्वक अधिवासन गरोस्, यसलाई मुनिहरू हरिशङ्करी यात्रा भन्दछन्। ज्वालाक्षेत्रको माहात्म्य शिवले हरिलाई भन्नुभयो, हरिले व्यासलाई भन्नुभयो, त्यो ज्वालामाहात्म्य मैले यहाँ प्रकाशित गरेँ। भुक्तिमुक्ति फल दिने, सर्वपातक नाश गर्ने, यस ज्वालामाहात्म्य जो मानिसले श्रवण गर्छन्, तिनले अभिलषित फल पाउँछन्। हे मुनि ! शुद्धबुद्धि भएका शान्त मनुष्यलाई तिमीले प्रयत्नले यो कथा सुनाउनू, दुष्ट र शूद्ररूपकालाई नभन्नू। भक्तिमान् मानिस यस पुस्तकको विशेषतया पठन, पाठन,श्रवण र दान गर्नाले शिवसायुज्य प्राप्त गर्छन्। ज्वालादेवी महापुण्यमयी छन्, ज्वालाक्षेत्र महा–अद्‌भुत छ, ज्वालाक्षेत्रका स्थानहरू पनि अद्‌भुत छन्, यो सबै अति दुर्लभ छ ॥५–११॥

कोटि जन्ममा आर्जेको पुण्य जसका देहमा प्रतिष्ठित छ, त्यसैले यस पावक क्षेत्रमा निवास र मृत्यु पाउँछन्। लोकमा अल्प पुण्यले ज्वालाक्षेत्रको दर्शन मानिसहरूले पाउँदैनन्, यो म सत्य भन्दछु। जो मनुष्य ज्वालाक्षेत्रमा दुर्लभ जन्म पाएर पावक देवको सेवा गर्छन्, ती संसारमा धन्य कहिन्छन्। त्यसकारण सबैले सदा मनोहर ज्वालाक्षेत्रको सेवन गर्नुपर्छ, यो क्षेत्र आयु, आरोग्य, स्वर्ग तथा मोक्षदायक र पवित्र छ। मुनिपुङ्गव अगस्त्यप्रति यसप्रकार यति भनेर देवसेनापति कुमार मौन हुनुभयो। ती अगस्त्य पनि स्कन्दलाई प्रणाम गरेर हर्षित भए। तदनन्तर अगस्त्य ज्वालाक्षेत्रमा गएर ज्वालाको पूजा गरेर विधिवत् पञ्चकोशी यात्रा समाप्त गरेर प्रसन्नचित्तले आफ्ना आश्रममा गए ॥१२–१७॥

# ६. ज्वालापुराण भाषा

(दुल्लु गुठी रनुखाना गाउँ बस्ने राजाराम उपाध्यायद्वारा सोही गाउँ बस्ने कृपाराम उपाध्याय र आफ्नो समेत रचनालाई संयोजन गरी सम्पादनसमेत गरेर तयार गरिएको ज्वालापुराण भाषा नामक कृति हो। यसबाट संस्कृत नजानेका सामान्य नरनारीहरूले पनि ज्वालाक्षेत्रको परिचय पाउनुका साथै महिमा पनि अवगत गर्न सक्छन्।)

ॐ स्वस्ति श्रीगणेशाय नमः

श्रीज्वालादेव्यै नमः

नरका बीचमा उत्तम भएका श्रीनारायण कन नमस्कार गरी सरस्वती देवी वेदव्यासजी कन नमस्कार गरी श्रवण गर्‍या यस्ता वह्नितीर्थका महिमा कन यथामति विस्तार गर्छु। शौनक आदि गर्‍याका वडाबुद्धिमान् निर्मल देश भयाका ऋषिहरूएकहट्टा भैकन सुत पौराणिक प्रति प्रश्न गर्दछन्॥ सूतजी आज्ञा गर्दछन्॥ हे ऋषि हो एकाग्र चित्त भै सून॥ पूर्वकालमा शिवजीले विष्णु भगवान् प्रति आज्ञा गर्नु भयाको वह्नितीर्थको महिमा सुनाउछु॥ यस्ता शिवजीका वचन सुनी॥ विष्णु बिन्ती गर्दछन्॥ सम्पूर्ण देवताहरू भन्दा श्रेष्ठ भयाका हे शिवजी! अग्निको उत्पत्ति कुन ठाउँबाट भयो यो कुरा विस्तार पूर्वक सुनाई बक्सनुहवस्॥

विष्णुले बिन्ती गर्‍याका वचन सुनी महादेवजी आज्ञा गर्दछन्॥ हे विष्णु! जौनठाउँबाट अग्नि प्रकट हुँदा भया यस्तो सत्यकुरो कौनैठाउँबाट पनि प्रकट न भयाको देखनामा अति सुन्दर भयाको यस्ता पवित्र तीर्थको महिमा कहन्छु॥ काशी प्रयाग मायापुरी हरिद्वार यी तीर्थ भन्दा पनि यसकलियुगमा उत्पन्न भयाका मनुष्यको पापनाश गर्‍या यो वह्नितीर्थ छ॥ हे विष्णो! परस्त्रीसँग गमन गर्‍या ब्राह्मणलाई दुःख दिन्या आर्कालाई दुःखदिने यस्ता दुष्टहरूका मुखेँजि यो पुराण न कहनु॥ यसको नाउ अग्निपुराण हो फटिक जस्तो निर्मल भयाको कस्तै वडा पापलाई पनि नाश गर्‍या यो वह्नितीर्थ छ॥ पूर्वकालमा वेदव्यासजीले एक पाउले जमिनमा टेकी तपस्या गर्‍या।

त्यो देखि शिवजी प्रसन्न भै हे ब्रह्मा! तिमीदेखि म प्रसन्न छु वर माग भनी वाचादिंदा भया॥ यति शिवजीका वचनसुनि व्यासजि बिन्ती गर्दछन्॥ हे प्रभो! मदेखि प्रसन्न भै बक्सनुहुन्छ भन्या॥ पापकन नाश गर्‍या वैश्वानरपुराण सुनाई बक्सनुहवस् भन्या॥

व्यासजीले बिन्ती गर्‍याका वचनकन सुनीमहादेवजी आज्ञा गर्दछन्॥ हे व्यासजी! तिमीलाई मैले पहिले नै वरदान दियाको हुनाले मुलुकमा धर्मस्थापन गर्नाका लागि महाभारत नामा ग्रन्थ बनाउनु भो सम्पूर्ण लोकका उद्धार गर्ना निमित्त यो वह्नि तीर्थ प्रकाश गर्‍या। तिनै लोकका सम्पूर्ण तीर्थ भन्दा यस तीर्थको महात्म्य ठूलो छ॥ भरतखण्डमा जन्म भयामा यो तीर्थ मिलोस भनी प्रकट गर्नाका लागी वेदव्यासजीले आफ्ना शिष्यहरूलाई सुनाउनु भो॥ गुरुले आफूले पडायाका शास्त्रकन पड्न्या आफ्ना सेवा टहलमा रहन्या शिष्यहरूलाई॥ गुप्त कुरो पनि कहनु भन्याहुनाले सूतलाई सुनाई बक्सनु भो॥ यो माहात्म्यलाई जसले पाठ गर्छन् अथवा पडीकन अर्कालाई सुनाउदछन्॥ यस्ता मनुष्यहरूका १० कुल पितृ पट्टि र १० कुल मातृपट्टि २० कुलको उद्धार हुन्छ॥ भन्या व्यासजिका वचनका सुनी सूतजी बिन्ती गर्दछन्।

हे प्रभो! २० कुलको उद्धार हुन्या यस्तो अपूर्व माहात्म्य सुनाई बक्सनु हवस् भन्या वचन सुनी व्यासजी आज्ञा गर्दछन्। हे सूत! एकाग्र चित्तगरी सुन॥ पूर्वकालमा मगध देशका सुवर्णाख्य नाउ गर्‍याका राजाले वह्नितीर्थ जाईकन मुसल प्रमाण घिउको धारागरी अग्निमा हवन गर्दा भया॥ यस्ता रीतले हवन गर्दा अग्निको तेज मन्द हुनाकन गो मन्द तेज भयाका अग्नि देखि मुस्काई हास्य गरी राजा आफ्ना दर्वारमा जानू भो। फेरि बिन्ती गर्दछन्॥ हे अग्ने! मैले हवन गर्‍याका घिउलाई चाडो पाक गरी बक्सनु हवस् भनी राजाले बिन्ती गर्दा त्यसै ठाउँमा ब्रह्माजी र अर्जुन प्राप्त हुनू भो।

मन्द तेज भयाका अग्निलाई देखि ब्रह्माजी आज्ञा गर्नु हुन्छ। हे अग्ने! यी अर्जुन हुन् प्रार्थना गर खाण्डव वनको भोजन माग। त्याहा गई सो वनलाई जलाउ त्यस वनमा चन्द्राबलि नाम भयाको नागछ॥ त्यसलाई मारी त्यसको वोसो ल्याई भोजन गर तब तिम्रो अजीर्णता दूर होला॥ यति ब्रह्माजीका वचन सुनी बृद्ध ब्राह्मणको रूप गरी हस्तीनापुरमा जाई अर्जुन प्रति बिन्ती गर्दछन्। हे प्रभो! मलाई इच्छापूर्वक भोजन दिवक्सनु हवस्॥ भन्या ब्राह्मणका वचन सुनी अग्निलाई साथमा ली खाण्डव वनमा सवारी गर्नु भो॥ अर्जुनको सवारी हुदावित्तीकै सुखपूर्वक खाण्डव वनका गुफामा पसी रहेको लुकी रहेको चन्द्रावलि नाम गर्‍याको नाग डरीकन बाहेर निस्केका नागलाई देखी गाण्डीव धनुषको ताँदोमा वाण चढाई नागको पुछरलाई काटी बक्सनु भो॥ त्यसका शरीरबाट बोसो वहन लाग्यो त्यही बोसो खानाका लागी अग्निले पनि जलाउन लागे॥ जसै अग्निले प्रवेश गर्‍या ताप सहन न सकी दुल्लु नाम गरेका पर्वतमा मूर्छा खाई त्यो नाग गिर्दो भयो॥ अग्नि पनि त्यसैका बोसामा लुब्ध भै रहँदा भया।

यस्ता तरहका शिवजीबाट आज्ञा गरेका वचन सुनी विष्णु भगवान् फेरि बिन्ती गर्नु हुन्छ॥ हे भगवान् स्वर्गवासी देवताहरूलाई दुर्लभ भयाको यस्तो यस वह्नितीर्थको महिमा सुनाई बक्सनु हवस्॥ पुण्य कन बडाउन्या देवताका स्थानहर

कति छ॥ कुन थानमा गई कुन कौन फल पाइन्छ॥ यो सकल कुरो विस्तारपूर्वक सुन्न पाउँ भनी विष्णुबाट बिन्ती गर्नु भयाको वचन कन सुनी शिवजी आज्ञा गर्नु हुन्छ – श्रीसूर्य उत्तरायणमा माघका मैना भरमा स्वर्ग लोकबाट ब्रह्मा आदि देवता तेत्तिस कोटि यक्ष राक्षस पन्नग गन्धर्व दैत्य किन्नरगणहरू आई वह्नितीर्थको सेवन पूजन दर्शन गर्दछन्॥ यस्ता उत्तम तीर्थमा गैकन जौन मनुष्यले माघ मैनामा स्नान दान जप हवन तर्पण पिण्डदान ब्राह्मणभोजन गराउँछन् तिनी मुनष्य यस लोकमा सुखभोग गरी अन्त्यमा वैकुण्ठ लोकमा बस्न पाउँदछन्॥

शिवजीबाट आज्ञा गरेका वचन सुनी फेरि विष्णु बिन्ती गर्दछन् हे भगवान् ! उर्ध रेखा भयाको दुर्लभ पर्वत छ त्यसका टकुरा मा देवताहरूले पनि दर्शन न पायाको यस्तो विश्व रूपको मूर्तिछ॥ त्यो मुर्ति कुन रीतले गुप्त हुन गो यो कुरो पनि विस्तार पूर्वक सुन्न पाउँ। हवन, स्नान, दान, जप, ध्यान, गर्दा पुण्ये धेरै हुन्या ब्रह्महत्यादिक पापलाई नष्टगर्न्या देवताका स्थान कति छन्॥ तीर्थ कति छन्॥ यो कुरा पनि सुन्नपाऊ भन्या विष्णुका वचन सुनी शिवजी आज्ञा गर्दछन्॥

हे विष्णु ! एकाग्रचित्त गरी सुन॥ विश्वरूपमा पूर्व दुल्लुनामा पर्वत छ त्यसपर्वतका माझमा धुलेश्वर छन्। त्यसठाउँमा ब्रह्मादि देवताहरू पार्वतीले सहित म पनि सेवन गर्छु॥ यिन धूलेश्वरको दर्शन गर्नाले सकल पाप नाश हुन्छन्॥ यस्का ईशानकोणमा ब्रह्मकुण्ड क्षीरकुण्ड, अमृतकुण्ड छन्॥ यिनी ३ कुण्डमा सम्पूर्ण तीर्थ वास गरिरहेका छन्॥ त्यहाँ गै जौन कर्म गर्न्या पनि जहाँसम्म चन्द्र सूर्य रहन्छन् वहाँसम्म कैले पनि नाश न हुन्या फल पाइन्छ॥ धूलेश्वरको नैर्ऋत्यकोणमा पादुका छन्॥ त्यस तीर्थमा स्नान, दान, जप, श्राद्ध जौन कर्म गर्न्या पनि त्रिभुवनमा न पाईने फल पाइन्छ॥ पादुकाकै नैर्ऋत्यमा स्वामीकार्तिक छन्॥ तिनको दर्शन, पूजन, स्तुति गर्नाले फेरि गर्भवास लिनु पर्दैन कस्तै पापी पनि मुक्त हुन्छन्। स्वामी कार्तिकका समीपमा उत्तरवाहिनी भैरवी नदी छन्॥ त्यस नदीमा स्नान, दान, जप, श्राद्ध गर्नाले गयाश्राद्धको भन्दा १ जहुको दाना प्रमाण अधिक फल पाइन्छ॥ त्यस तीर्थमा जाई कन जौन मनुष्यले तप, हवन, पूजन, दान गर्छन् यस्ता मनुष्य यस जन्ममा सकल ऐश्वर्य भोग गरी मुक्त हुन्छन्॥ अर्को जन्म लिया पनि चक्रवर्ती राजा भै रहन्छन्॥ धूलेश्वरका पूर्व दिशाका अधा भागमा ब्रह्मकुण्ड छ त्यसका उत्तर पट्टि वाणगङ्गा छन्॥ त्यसैका नगिचमा गङ्गा छन्॥ यिनी पञ्च गङ्गाका उर्द्धभागमा उर्द्धमुखी नदी छन्। ती नदीको दर्शन, स्नान गर्नाले सकल पाप भस्म हुन्छन्॥

तिनी नदीका अधोभागमा रुद्रलिङ्ग नामा महादेव तेत्तिसकोटि देवताहरूलाई साथ लिई भक्तहरूको मन कान्छा पूर्ण गर्ना निमित्त बसेका छन्॥ रुद्रलिङ्गका अगाडि कामधेनु र मोक्षधेनु छन्॥ त्यहाँ गई दर्शन गर्नाले मनको इच्छा पुग्दछ॥ तिनी कामधेनुका अगाडि कपाल नाउ गर्न्याको तीर्थ छ। त्यसमा स्नान, दान, मार्जन गर्नाले ब्रह्महत्यादि पातक नाश हुन्छन्॥ यस्का अगाडि ऋणमोचनी र पापमोचनी दुई तीर्थ छन्॥ ती तीर्थमा गै गोदान गरी ब्राह्मणलाई दिनु सात जन्मको पातक छुट्दछ॥ त्यसका अगाडि धर्मराजको मूर्ति छ॥ तिनका अगाडि भीमसेन छन्॥ तिनीका दर्शनले सकल पाप नष्ट हुन्छ॥ तिनीका अगाडि नृसिंह छन्॥ तिनीका दर्शनले पाप नष्ट हुन्छ॥ तिनीका अगाडि पार्वतीको मूर्ति छ। लोमशा नामा ऋषिको गुफा पनि छ। तिनीको दर्शन गर्नाले सात जन्म पर्यन्त मनुष्य सुखी रहन्छन्॥ त्यसका समीपमा सेतोवन भयाको दुल्लू छ त्यसको तिलक पहिर्नाले मनुष्य सुखी रहन्छन्॥ त्यसैका नगिचमा कर्मभूमि नामा तीर्थ छ त्यस ठाउँमा कैल्हे न मर्न्या अग्नि छ। सदा जलिरहन्छ त्यस तीर्थमा स्नान, दान, जप, होम, गर्नाले जलपान गर्नाले फेरि जन्म लिनु पर्दैन॥ त्यसपछि इन्द्रियको दर्शन गर्नु पुत्र प्राप्त हुन्छ॥ नाभिस्थानमा गई स्नान, दान, तर्पण,श्राद्ध गरी जहु, तिल, घिउ मिलाई हवन गर्नु पितृहरूको तृप्ति हुन्छ र मनकान्छा पूर्णहुन्छ। यति तीर्थको महिमा कन सुनी फेरि पनी शिवजी प्रति प्रश्न गर्दछन्॥ हे प्रभो ! नाभिस्थानमा मर्न्याका मनुष्यहरू कुन ठाउँमा बस्न पाउँदछन्॥ यो कुरा पनि सुनाई बक्सनुहवस्॥ भन्या वचन सुनी शिवजी आज्ञा गर्छन् हे विष्णु ! सुन॥

अरू तीर्थमा मर्न्या मनुष्यहरू वैकुण्ठ एवं स्वर्गलोकमा वास पाउँछन्॥ नाभिस्थानमा मर्न्या साक्षात् मेरै कैलासमा मेरो लोकमा वास पाउँदछन्॥ नाभिस्थानमा स्नान, दान, जप, होम गर्न्यालाई करोड यज्ञ गर्न्याको फल पाइन्छ॥ उत्तम गति पनि पाइन्छ॥ यति कुरो गरी विद्वान् ब्राह्मणहरूको पूजन गरी पेडा, वर्फी, मालपुवा, खीर दिई जसले भोजन गराउँदाछन्, तिनलाई करोड ब्राह्मण भोजन गरायाको फल मिल्दछ। त्यसका पूर्व दिशाका अधोभागमा भृगुस्थान नामा तीर्थ छ॥ यसमा मरण भयाकालाई स्वर्गलोक प्राप्त हुन्छ॥ फेरि जन्म लिया पनि उत्तम कुलमा जन्म हुन्छ त्यससस्थानका पूर्वपट्टि केदारनामा तीर्थ छ। त्यसको दर्शन पूजन ध्यान गर्नाले फेरि जन्म लिनुपर्दैन॥ यसका अधोभागमा निर्मल ब्रह्मकुण्ड छ त्यसमा स्नान, मार्जन गर्नाले ब्रह्महत्यादि पातक दुर हुन्छन्॥

त्यसै ठाउँमा शिवकुण्ड, विष्णुकुण्ड, अमृतकुण्ड, रसायनकुण्ड, घृतकुण्ड र अग्निकुण्ड छन्॥ तिनका विचमा हवन गर्नाले मुख, नेत्र, शिर, शिखा तृप्त हुन्छन्॥ त्यहाँपछि क्षेत्रपालको दर्शन गर्नू॥ तिनका नगिचमा सारगङ्गा छ। नदीसङ्गम पनि छ॥ त्यस ठाउँमा जसले स्नान, दान, जप, होम, तर्पण, पिण्डदान गर्छन् तिनी मुनष्यका २१ कुलको उद्धार हुन्छ। नरकवास गर्नु पर्दैन॥ त्यसका उत्तरपट्टि देवतागणले सेवन गर्न्याको जल भएको पृथ्वी छ लेस ठाउँमा जौन कर्म गर्न्या पनि असंख्यात फल पाइन्छ। वैश्वानर तीर्थ कस्तो छ भने मोक्षकन दिन्या यस तीर्थमा जसले देह छोड्छन् तिनले फेरि जन्मलिनु पर्दैन॥ त्यसै

ठाउँमा पिपलको वृक्ष पनि छ॥ सुधाकुण्ड पनि छ॥ त्यस कुण्डमा स्नान गरी जलपान जसले गर्दछन् सुवर्णादि दान जसले गर्दछन् तिनी मनुष्यको स्वर्गवास हुन्छ॥

यस्ता वचन सुनी फेरि पनी विष्णुभगवान् बिन्तीगर्छन्॥ हे प्रभो ! स्नान, दान, जप, होम,कोटितीर्थ सेवन गर्नाले कौ नफल पाइन्छ भन्या यस्ता विष्णु भगवान्का वचन सुनी शिवजी आज्ञा गर्दछन्॥ हे विष्णु ! पावकतीर्थमा जान मनसुवा गरी घरबाट एक पाईला जमिन हिँड्या पनि पाईला पछि एक हजार राजसूय यज्ञ गऱ्याको फल पाइन्छ॥ त्यो मनुष्य मरी स्वर्ग जाँदा वाटमा इन्द्र, चन्द्र, कुवेर, बाटो देखाउन्या भै अगाडि २ हिड्दछन्॥ कौन मनुष्यले त्यस पावक तीर्थमा जाईकन श्राद्ध, पिण्डदान, ब्राह्मणभोजन गराउदछन् तिनका २० कुलको उद्धार हुन्छ।

यस पञ्चकोसी भित्र पर्वतबाट लोटिकन मऱ्या गाई भैसी, बाघ, भालु, सर्प यिनीहरूका हातबाट मरेका, विष खाई कन मऱ्याका कुयोनिमा जादैनन् स्वर्गवास हुन्छ कीटपतङ्ग मर्छ र अरू नाना प्रकारका जीवजन्तुले पनि त्यस पुण्यभूमिमा प्राण त्याग गऱ्यो भन्या उत्तमगति पाउँछन्॥ यस्ता यस तीर्थको सेवन पाँच पटक आहुति गऱ्या एक खण्ड पृथ्वी दान गऱ्याको फल पाइन्छ॥ यो पावकतीर्थमा जहु, तिल, चावल सहित गोदान गरी ब्राह्मणलाई दिन्छन् तिनलाई जति दाना दान गरे को छ त्यति वर्षसम्म वैकुण्ठवास हुन्छ॥ जसले पृथ्वीको दान गर्दछन् तिनीलाई चौधइन्द्रको वदली हुन्ज्यालसम्म स्वर्गलोक (प्राप्त) हुन्छ॥

मध्य तीर्थमा एक ब्रह्मशिला छ त्यसतीर्थमा एक सय आठ ब्राह्मण भोजन गराउनु अथवा एकै ब्राह्मण भोजन गराए पनिकोटि ब्राह्मणभोजन गरायाको फल पाइन्छ यहाँ पुराणको श्रवण गरी विशेष दान पनि गर्नु भन्या शिवजीका वचन सुनी विष्णु फेरि बिन्ती गर्दछन् हे प्रभो ! जात पतित भैकन मऱ्याका मनुष्यहरू कौन गति पाउँदछन् भनी प्रश्न गरेको सुनी शङ्कर आज्ञा गर्दछन्। हे विष्णु ! यस पञ्चकोसी भित्र जात पतित भै मरेका पनि चन्द्र सूर्यको गति रहञ्ज्याल वैकुण्ठमा बस्न पाउँदछन्। काम, क्रोध, लोभ, मोह, मद, मात्सर्यलाई वश गऱ्याका यस्ता विष्णुभक्त ब्रह्मचारीहरूले देह छोड्दामा यस्तो गति हुन्छ भनी हजार मुख भयाका शेषजीले पनि त्यस्का पुण्यलाई वर्णन गर्न सक्दैनन्।

यो जगत् संसार जलमय भई डूबेका बखतमा पनि पावक तीर्थ डुब्दैन यस तीर्थमा प्राण त्याग गर्न्यालाई फेरि जन्म लिनु पऱ्या पनि वडाका घरमा हुन्छ। यस तीर्थको जसले भक्तिपूर्वक सेवा गर्दछ तिनी मनुष्यको सात जन्म पर्यन्त गऱ्याको पाप नष्ट हुन्छ २० कोस प्रमाण विस्तार भयाको यस भित्र जसले प्राणत्याग गऱ्या पनि मुक्त हुन्छन् ब्राह्मण क्षत्रिय वैश्य क्षुद्र, चाण्डाल यिनीहरूका कुलमा जन्म भयाकाले पनि यो पञ्चकोसी भरमा देह त्याग गऱ्यो भन्या उत्तमगति पाउछन्। वैश्वानर तीर्थको जलपान गरी जुन मनुष्यहरू जुन देशमा जान्छन् त्यो देश पवित्र हुन्छ। आफ्ना कुलधर्ममा रही ब्रह्मचर्य गरी एक पाउ जमिनमा टेकी वायुका आहार गरी खरको ओछ्यान्मा सुती दिगंवर भई जुन मनुष्य जप गर्दछन् त्यस तपस्याका प्रभावले हे विष्णु ! तपाईंका र मेरा लोकमा बस्न पाउँदछन्। जो मनुष्य अग्निको यस तीर्थमा स्नान गरी पितृलाई तर्पण,श्राद्ध गर्दछन्। तिनीहरू लोकपालका नगरमा वस्न पाउदछन्। धर्मात्मा मनुष्यहरू पञ्चकोसीमा देह छोडी मेरो कैलासमा मेरै स्वरूप भै रहन्छन्।

कलिकालका मनुष्यलाई उद्धार गर्न्या यो तीर्थ जस्तो अरू तीर्थ छैनन् यो तीर्थमा देवताहरू जाई नित्य दर्शन गरी नैवेद्य भोजन गर्दछन्। जुन कुन महिनामा स्नान, दान, जप, ध्यान, हवन गर्नाले द्विगुण वड्ताफल पाइन्छ। गुप्तदान पनि गर्नु भन्या वचन सुनि विष्णुजीबिन्ती गर्दछन्। हे शङ्कर ! हजुरका मुखारविन्दबाट वैश्वानर तीर्थको महिमा सुन्न पाउँदा म कृतार्थ भएँ पावकतीर्थ ममाथि प्रसन्न रहौन्। सकल तीर्थको र देवताहरूको महात्म्य पनि सुन्या। एक कुरामा मलाई संदेह छ। हे भगवान् ! आफ्ना जातिले न खाने अभक्ष कुरा खान्या मनुष्यको पाप कसोगरी नाश हुन्छ भन्या वचन सुनी शिवजी आज्ञा गर्दछन्।

हे विष्णु ! सुनिबक्सनु हवस्। यस तीर्थको महिमा पृथक् गरी बताउदछु। ब्रह्महत्या गर्न्या सुवर्ण, नुन, घिउकन चोर्न्या अर्काको जगाहर्न्या, परस्त्रीसँग गमन गर्न्या, गोमांस खाने , अर्काको सम्पत्तिदेखि रीस गर्न्या मित्रसँग कठोर वचन गर्न्या यति पातकी र सर्प, बाघ, हाती, भालु आदि जीवका हातबाट मऱ्याका यति वैश्वानर तीर्थमा देह छोड्दछन् भन्या उत्तम गति स्वर्गवास पाउँछन्। नरकभोग गर्नु पर्दैन फटिक जस्तो निर्मल देह हुन्छ। यिनी मनुष्यले शोक पनि गर्नु पर्दैन सय जन्मपर्यन्त सुखी हुन्छन्। भन्या वचन सुनी विष्णु भगवान् फेरि प्रश्न गर्नु हुन्छ। हे शङ्कर ! पापिष्ठका कुलमा जन्म भया चार जाति मनुष्यहरूको र पशुपक्षी कीटपतंग वृक्ष इत्यादि जीवहरूको कसो गरी उद्धार हुन्छ यो कुरा आज्ञा हवस् भनी बिन्ती गऱ्याका वचन सुनी शिवजी आज्ञा गर्दछन्।

हे विष्णु ! सुन यिनी जीवहरूमा जसले जस्तो कर्म गऱ्याको छ त्यसले सोही माफिक फल भोग गर्नु पर्दछ। सय जन्मको पुण्य एक हट्ठा भई वैश्वानरतीर्थमा देह त्याग गऱ्यो भने सकल जन्म जन्मान्तरमा गऱ्याको पातक नाश गरी वैकुण्ठमा बस्न पाउँदछन्। फेरि जन्म लियापनि उत्तम कुलमा धन विद्याले संयुक्त भै सकल ऐश्वर्यको भोग गर्दछन्। यो तीर्थ वडो दुर्लभ छ। यस तीर्थका बिचमा ब्रह्मा, विष्णु रुद्र, लोकपाल, सदाशिव, तेत्तिस कोटि देवता, गण, यक्ष, विद्याधर, सर्प, दानव, चन्द्र,

सूर्य, दश दिक्पाल, नक्षत्र, ग्रह, तारागण, विद्याधर, तिलोतमा, सुकेशी, मञ्जुघोषा, उर्वशी, आदि गऱ्याका अप्सराहरूसमेत एक हव्ठा भै पावकतीर्थको नित्य सेवा गरी पूजा गरी हर्ष मन भई कोही बाजा बजाउँछन्। कोही भेरी नाम गऱ्याका पटह नाम गऱ्याका मर्दल नाम गऱ्याका पनि बजाई बडो उत्सव गरी रहन्छन्। किन्नरगणहरूले नृत्य गर्दा वेनु बजाउँदा अप्सराहरू नाच्दछन् । रमणीय स्वरले गायन गर्दछन्। त्यो सब सुनी पञ्चकोसी भरका जीवजन्तुहरू पनि बडो हर्ष मानी गायन सुन्दछन्। तिनीहरूका शब्दले स्वर्गलोकमा पनि आनन्द हुँदो भयो पृथ्वी पनि हिल्न लाग्दीभइन्। यिनी देवताहरू सब एक हव्ठा भै अगर, कस्तुरी, केसर, कुम्कुम आदि गरेका सुगन्ध वाला चन्दन, रमणीय फूलहरू मीठा मीठा फल चढाई अष्टसुगन्धि वाला धूप चडाई नाना रङ्ग रङ्गका ध्वजा पताका चडाई पूजन गर्दछन्। पछिबाट जय विजय नाम गरेका गणहरूको पूजा गरी नाना प्रकारको स्तुतिपाठ गरी नमस्कार दण्डवत् गरी रहन्छन्।

हे विष्णु ! यस पृथ्वीखण्ड भरतखण्ड भरमा यो वैश्वानरतीर्थ भन्दा दोस्रो ठूलो तीर्थ कोही छैन। यसले भोग, स्वर्ग, मोक्ष, धन, सम्पत्ति वडाउँछ। जस मनुष्यले जुन कुरो मनमा चिताई तीर्थको सेवा गऱ्याको छ त्यसको सकल मनकान्छा पूर्ण हुन्छ। जसले यस्ता उत्तम तीर्थको जसले सेवा गर्दैनन् तिनीलाई पशु पनि माघका महिनामा ब्रह्मा विष्णु आदि तेत्तिसकोटि देवताहरू नित्य पूजा गर्दछन् यस निमित्त माघ महिनामा अवश्य पावक तीर्थको दर्शन चाहिन्छ। जुन मनुष्यले यो महिनामा दर्शन गर्दछन्, तिनीहरूलाई देवताहरूले पनि दण्डवत् गर्दछन्। यस जन्ममा सकल ऐश्वर्यभोग गरी अन्त्यमा विष्णु पदवी पाउँदछन् यो तीर्थको महिमा कलिकालमा उत्पन्न भएका मनुष्यहरूको उद्धार गर्ना निमित्त मैले प्रकाश गऱ्या।

यस्ता शिवजीका वचन सुनी विष्णु भगवान् फेरि बिन्ती गर्नु हुन्छ हे शङ्कर ! यो नवखण्ड पृथ्वीमा सर्वदा जली रह्याको अग्नि छ पाँच हजार वर्षसम्म रहन्याछ सत्यव्रत धारण गरी आफ्ना कुल धर्ममा रही जसले पावकको पूजन गर्दछन्, ती मनुष्यहरू वैकुण्ठ पदवी पाउँदछन्। अधम जन्म भयाका कीटपतङ्ग, माछा, कछुवा अनेक जीवजन्तुहरूले पनि यो तीर्थमा प्राण त्याग गऱ्यो भन्या तिनीहरू पनि मुक्त हुन्छन्। यस पृथ्वीभरमा ज्वलितमान भयाको पावक नामक गऱ्याको यो तीर्थ वडो उत्तम छ।

यस तीर्थमा हवन गर्नाले पितृको श्राद्ध गर्नाले कस्तै घोर पाप पनि नष्ट हुन्छन्। यो वैश्वानर पुराण प्रत्यक्ष त्योतिरूप छ भन्या इत्यादि शिवजीबाट आज्ञा गऱ्याका वचन सुनी श्रीविष्णुजी अधिक प्रसन्न भैबक्सनु भो फेरि पार्वतीजीश्रीशिवजी प्रति बिन्ती गर्दछिन् हे प्रभो ! ब्रह्मयामल नाम गरेको पुराणहजुरको मुखारविन्दबाट सुन्न पाऐं पावक तीर्थको महिमा सुन्नाको इच्छा छ चराचर यो संसारमा कुन कुन रूपले जीवहरू रहन्छन् सम्पूर्ण तीर्थ भन्दा उत्तम तीर्थको कलिकालमा उत्पन्न भएका पापी पुरुषहरूको उद्धार कसो गरी हुन्छ यो कुरो पनि आज्ञा हवस् भन्या पार्वतीजीबाट बिन्ती गऱ्याका वचन सुनी शिवजी आज्ञा गर्दछन् हे पार्वती ! एक चित्तगरी सुन तिमीले सुन्दर कुराको प्रश्न गऱ्यौ। यस कलियुगमा मैले प्रकट गरेको तीर्थको महिमा सुन। अरू तीर्थ यस पृथ्वीमा पहिल नै भएका हुन् यो पावक तीर्थ अहिल्यै प्रकट गरेका पावकका नगिचमा भैरवी नामा नदी छन् दुबै पर्वतका नगिचमा उत्तरवाहिनी नदी छन् तिनी नदीको दर्शन, मार्जन, स्नान गरी तिन नदीका तर्पण, श्राद्ध गर्नू सय कुलको उद्धार हुन्छ। ती नदीका दक्षिणपट्टि सिद्धेश्वर नामा पर्वत छ त्यस पर्वतका दर्शन गर्नामात्रले सकल कार्य सिद्ध हुन्छ यस पर्वतमा सिद्धिदानामा नदी छन् त्यस नदीमा स्नान, मार्जन गर्नाले वैकुण्ठवास हुन्छ। त्यसै नदीमा श्राद्ध, मार्जन गर्नाले, अग्निको पूजन गर्नाले सय अश्वमेध हजार राजसूययज्ञ गरेको फल पाइन्छ।

यस तीर्थमा रहेका शिवलिङ्गको महिमा पनि बताउँदछु सुन हे पार्वती ! सय जन्मसम्म तपस्या गर्नाले जो फल पाइन्छ जन्मजन्मान्तर गरेको पातक पनि नष्ट हुन्छ क्षेत्रपालको पनि दर्शन गर्नु ब्रह्मशिला तीर्थ कसरी तीर्थ सलभतीर्थ भृगुतीर्थका पश्चिम दिशामा छन्, यति तीर्थमा प्राण त्याग गरे मनुष्यहरूको र तिनीहरूको समेत् वैकुण्ठ वास हुन्छ नरक भोग गर्नु पर्दैन। सारगङ्गा जमुना नाम गरेका २ नदी पनि त्यही छन् । यसमा स्नान, दान, जप, होम, तर्पण,श्राद्ध गर्नाले गोदान गरी ब्राह्मणभोजन गराउनाले फेरि जन्मलिनु पर्दैन पितृको पनि उद्धार हुन्छ। एक ब्राह्मणको भोजन गराए पनि १ हजार ब्राह्मणको भोजन गराएको फल हुन्छ।

यस्ता शिवजीका वचन सुनी पार्वती बिन्ती गर्दछिन् हे प्रभो ! सत्य भनेको के हो पावकको पूजा होम कुन विधिले गर्नु भन्या पार्वतीले बिन्ती गरेको वचन सुनी महादेवजी आज्ञा गर्दछन् हे पार्वती ! सुन प्रथम देह शुद्धि पछि अग्निको पूजन गर्नु पापी पुरुषलाई दर्शन न दिन्या धर्मात्मालाई प्रत्यक्ष दर्शन दिन्या साक्षात् शिव स्वरूप हुन् भनी जान्नु। यस तीर्थको दर्शन तीर्थ गर्न जान्या पुण्यात्मा पुरुषलाई सात ज्वालाको दर्शन पाइन्छ। पापी पुरुषलाई धुवाले रहित भएको एक ज्वालामात्र देखिन्छ। त्यस ठाउँमा गईकन तेत्तिस कोटि देवताका मुख भएका अग्निको पूजन पनि गर्नु, हवन गर्नु शुद्ध देह हुन्छ। पितृको तर्पण,श्राद्ध गर्नु त्यसपछि एकाक्षरी मन्त्रपढी गर्नु हवन गरी सकी षडङ्ग न्यास पनि गर्नु ॐकार पढीकन शिर हात राख्नु नकार हृदयमा र ाख्नु मकार मुखमा राख्नु दाहिने कानमा वकार राख्नु देब्रे कानमा, स्वाहाकार राख्नु, मध्येमा नकार राख्नु, राभन्ने अक्षरलाई हृदयमा राख्नु, पकारलाई घाँटीमा स्थापना गर्नु यस्ता तरहले न्यास गरी वैश्वानर गायत्रीको जप गरी वेदमन्त्र पढी प्रदक्षिणा तिन

फेरा गर्नु यस्ता विधिले जो मनुष्य पूजन गर्दछन् तिनीहरूको सकल पाप भस्म हुन्छ फटिक जस्तो निर्मल देह हुन्छ। त्यसपछि होम गरि बाकिँ रहेको एक पल घिउ पिपलका पातमा हाली वह्निगायत्री पढी त्यसै कुण्डको जल मिलाई खानु यस कुण्डका बिचमा एक धर्मशिला छ। त्यस कुण्डको जलपान गर्नु एक हजार राजसूययज्ञ गरेको फल पाइन्छ कस्तै पाप गरेको भए पनि सकल पाप नाश हुन्छन्। श्री सूर्य उदय हुँदा अन्धकार नष्ट भए झैँ नाश हुन्छन् मोक्षको इच्छा गर्न्याले जलमिलाई घिउ खानु आयुको इच्छा तिलमलाई खानु विद्याको इच्छा गर्न्याले कस्तूरी मिलाई खानु धनको इच्छा गर्नाले महसँग खानु कैले गर्भिनी नहुन्या छुति पनि नहुन्या बालकहरू पनि जन्मदै मर्दै हुन्या यस्ता स्त्रीजातले दुधमिलाई खानु गर्भवती हुन्छन् बालक पनि मर्दैनन् दुष्ट भाग्य भएका सुन्दर भाग्यवती हुन्छन् रोगी मनुष्यले अबलाका फलसँग खानु रोग निवृत्त हुन्छ सकल पाप पनि नाश हुन्छ अग्नि कुण्डको जलमा घिउ मिलाई जुन मनुष्यहरू कैलाशमा जान्छन् हे पार्वती ! यसको नाउ रसायनकुण्ड हो सम्पूर्ण तीर्थ दान, व्रत, गर्नामा जुन फल पाइन्छ सो फल यस कुण्डको जलपिउनाले पाइन्छ त्यस पर्वतका मध्यमा रुद्रावती नामा नदी छन् त्यस ठाउँमा पद्मावती नदी पनि छन् यिनी दुबै नदीका सङ्गममा प्रेतशिला छ त्यसका नगिचमा स्नान दान तर्पण पिण्डदान गर्न्या मनुष्यका २० कुल पितृगणको उद्धार हुन्छ यस जन्ममा सुख भोग गरी अन्त समय वैकुण्ठ वास हुन्छ ॥९४॥

जुन कुनै मनुष्यले राजन्का कुलमा जन्म लिइकन यस तीर्थमा गई स्नान, दान,श्राद्ध, तर्पण, ब्राह्मणभोजन गरायो भने तिनको राज्य पनि सफल हुन्छ। धन पनि बड्दछ यस्तारितले रुद्रावती र पद्मावती नदीका समीपमा गई यत्ति कर्म गरी कालाग्निको जसले दर्शन गर्छन् यिनी मनुष्यहरूले कस्तै घोर पातक गरेको भए पनि सकल पातक नष्ट हुन्छन्, देह शुद्ध हुन्छ, अन्त्य कालमा शिवलोकमा वास हुन्छ रुद्रावती पद्मावती नदीका माझमा अग्नि ईश्वर नामा देवता छन् त्यस ठाउँ पिण्ड दान गर्नाले गयाजीमा पिण्डदान गरेको भन्दा एक जहुको दाना प्रमाण अधिक फल पाइन्छ। पितृगणको उद्धार हुन्छ यिनी नदीका दक्षिण पट्टि नासिका तीर्थ छ, चक्षुतीर्थ, ललाट तीर्थ छ त्यस तीर्थको दर्शन गर्नाले सकल पातक नाश हुन्छन् होम गर्नाले एक हजार गोदान गरेको फल पाइन्छ। त्यस तीर्थका दाहिनेपट्टि कर्णतीर्थ सिखातीर्थ नासिका तीर्थछन् त्यस ठाउँमा होम, दान, जप,श्राद्ध गर्नाले अक्षय फल पाइन्छ देह पनि शुद्ध हुन्छ।

यस तीर्थका नगिचमा गन्धमादननामा पर्वत छ। त्यस पर्वतका माझमा मालिका नामा देवी छन् तिनी देवीका नगिचमा गई दर्शन गर्नाले, हवन गर्नाले मनमा चिन्तना गरेको सकल कार्य सिद्ध हुन्छ मरण समयमा मुक्ति पाइन्छ। तिनी देवीका दाहिने पट्टि मालतीनामा नदी छन् ती नदीमा स्नान, दान, जलपान गर्नाले वचनले कर्मले गरेको पाप नाश हुन्छन्। यस नदीका वायाँ पट्टि सिद्धगङ्गा नाम नदी छन् ती नदीमा स्नान, दान, जप,श्राद्ध, तर्पण गर्नाले, ब्राह्मण भोजन गराउनाले राजसूययज्ञ गरेको फल पाइन्छ यिनी कोटिला तीर्थका माझमा प्रख्यात भएको एक शिवलिङ्ग छ तिनका समीपमा गईकन जुन मनुष्यले भक्तिपूर्वक सुगन्धवाला चन्दन, पुष्प, रङ्ग रङ्गका ध्वजा पताका चढाई सुगन्धवाला धूप चढाउदछन् चिनी, घिउ, तिल मिलाई हवन गरी ब्राह्मणभोजन खीरले गराई पञ्चामृतादिले सदा सर्वदा जलि रह्याका साक्षात् कालाग्निरूप शिवजीले वासलिया को यो तीर्थ छ यस तीर्थको दर्शन गर्ना निमित्त स्वर्गलोकबाट पनि तेत्तिस कोटि देवताहरू आई नित्य सेवा गर्छन्।

हे पार्वती ! यो अग्नितीर्थको महिमालाई वर्णन गर्न हजार मुख भएका शेषजीले र चार मुख भएका ब्रह्माजीले पनि सक्दैनन्। स्वर्गलोकमा वास गर्न्या देवताहरू पनि बडा यत्नले दर्शन पाउँदछन्। यस कलिकालमा यो वैश्वानर तीर्थ बडो दुर्लभ छ, धर्म, अर्थ, काम, मोक्ष चतुर्वर्ग पुरुषार्थ सिद्ध हुन्छ। यस्ता तीर्थको दर्शन नगर्न्या मनुष्यलाई पशु हुन् भनी जान्नु। यति तीर्थको दर्शन गरी सकी सिद्धेश्वरमा जानु वाहा पछि स्वामी कार्तिकको दर्शन गर्नु पछि पादुकाको दर्शन गर्नु धूलेश्वरको दर्शन गर्नु। वहाँ पछि इन्द्रियको दर्शन गर्नु पछि मुखको दर्शन गर्नु नासिकाको दर्शन गर्नु नेत्रको दर्शन गर्नु पछि प्रेतशिलामा जानु यति सब स्थानको प्रदक्षिण गर्नु र करोड तीर्थ स्नान दर्शन प्रदक्षिणा गरेको फल पाइन्छ प्रेतशिलाको दर्शन गरी पार्वतीसहित शिवजीको दर्शन गर्नु मालती नदीमा स्नान गर्नु माधव नाम भगवान्को पूजा गर्नु हवन पनि गर्नु यति गर्नाले मनुष्यहरूको सकल कामना सिद्ध हुन्छन्।

हे पार्वती ! यस विधिले दर्शन, पूजन, हवन गरी वैश्वानर माहात्म्य श्रवण गर्नु यो पुराण कस्तो भने शिवजीबाट विष्णु भगवान्ले श्रवण गर्नु भो, विष्णुले वेदव्यासजीलाई सुनाउनुभयो। यस्ता उत्तम पुराणलाई जुन मनुष्यले भक्तिपूर्वक सुन्दछन् अथवा सुनाउँदछन्, ती मनुष्यहरू स्वर्गलोकमा जान्छन् तिनी मनुष्यका सकल पाप पनि नष्ट हुन्छन्।

हे विष्णो ! यो वैश्वानरपुराण मैले तिमीलाई सुनाएँ वेदव्यासजीले पृथ्वीतलमा प्रकट गरे। दुष्टहरूका मुखैजि यो पुराण न कहनु शान्तबुद्धि भएका धर्मबुद्धि भएका भक्तिवाला मानिसलाई मात्र सुनाउनु यो पुराण सुनी पञ्चकोसी देवताको प्रदक्षिणा गर्छन् ती मनुष्यहरूले यस लोकमा सुखभोग गर्छन् अन्त्यसमयमा स्वर्गलोकमा वास हुन्छ पञ्चकोसी गर्न र सक्न्या मनुष्यहरूले यस वैश्वानरपुराणको श्रवण गर्नू पुस्तकको पूजा गर्नू सकल तीर्थ प्रदक्षिणा गरेको फल पाइन्छ। १२६॥

इति श्री वैश्वानर पुराणे पञ्चकोसी माहात्म्ये श्रीसिद्धथलीमाहात्म्यवर्णनम् ॥ श्री साके १८११ सम्वत् १९४६ पौष कृष्णाष्टम्यां तिथौ ॥ ...श्री दैलेकाख्यपुरे .... सन्निधो उप्रेत ... शिव भक्त कृति ..धर्मार्थमिदं पुस्तकम्।

# ७. ज्वालादेवीको भाषास्तुति

**(रत्न नाम गरेका कुनै भक्तले ज्वालामाईको दर्शन पाएपछि चित्त शुद्ध भई सत्त्वगुणको विकास हुँदा भक्तिभावनाको आवेशमा भगवती ज्वालादेवीको नेपाली भाषा पद्यहरूद्वारा स्तव गरेका थिए। सोही स्तव यहाँ प्रस्तुत गरिएको छ।)**

जन्मभूमि जननी अब मेरा। नित्य हृत्कमलमा गरि डेरा॥
व्याधि आधिहरूको गरि नाश। आत्मशक्ति गरि पाउँ विकाश॥
महामाये ज्वाले जननि जगदानन्दनकरी। महामोहज्वालाशमनपटुपीयूषलहरी॥
हजुर्का पाऊमा मन वचन आत्मा सव धरी। म गर्छू भक्तीले प्रणति शतकोटि अघि सरी॥१॥
चिदानन्दे बन्द्ये परमसुखकन्दे भगवति। हजुर्का पाऊमा सविनय म यो गर्छु विनति॥
हजुर्को यो ज्वालामय जटिल मूर्ती छ अगम। कसैले पाउन्नन् जननि यसको तत्व परम॥२॥
उही यो हो ज्वाला मदन जसमाहाँ परि जले। प्रतापी मायावी त्रिपुर जसमा हुर्हुरि वले॥
वडा भारी उच्चा गिरि पनि तृणै भैँ गरि ढले। शिलाराशी उन्का सहज मइनै भैँ गरि गले॥३॥
यसैका ज्योतीले जगमग जगत् गर्छ जननि। यसैका ज्योतीमा ज्वलित भइ जाने पछि पनि॥
यसैका ज्योतीको जगबिच खडा जीव सब छन्। जगन्मातर् यस्को गजब महिमा जान्दछ कउन्॥४॥
कहीले उब्ज्यो यो कति दिन रह्यो आखिरमहाँ। कहाँ जाला फेरि कति दिन रही यै रित यहाँ॥
कतै अत्ता पत्ता रति पनि न मिल्ने जननि यो। हजुर्का मूर्तीको अतुल महिमा येहि बुझियो॥५॥
म जस्ता कोटियौँ जन जननि जन्मे अरू कति। यहाँ छन् जन्मेका पछि पनि हुनेछन् अझ कति॥
कहाँ केको केभो अदलि बदलि कैयुन भए। तथापि ज्यौका त्यौ स्थिर छ उहि यो ज्योति परमे॥६॥
शिरोनाभीपादस्थल भनि यहाँ जो तिन कुरा। रहेका छन् मूर्तीत्रय हजुर्का जान्दछु पुरा॥
सदा गर्छन् सेवा जननि जसले ती सकलको। स्वयं भुक्ती मुक्ती सहज करमा नाच्छ तिनको॥७॥
हजुरै द्यौताको मुख हजुरमा आहुति दिँदा। खुसी हुन्छन् सारा ससुरनरपित्रादिक सदा॥
कुनै छैनन् त्यस्ता शुभ फल दिने कर्म जसमा। पुरा हो ओस् कोही विधि हजुर वेगर्जगतमा॥८॥
ज्वलज्ज्वालामालाऽऽकुलितकपिलाकारकुटिल। झरीमा झल्केको चपलविजुलीतुल्यजटिल॥
दिगन्तव्यालम्बीजलदपटलोच्छेदकुशल। हजुर्को यो मूर्ती हृदय बिच झल्कोस् झलमल॥९॥
हजुर्को तेजस्वी अनुपम यही रूप मनमा। लिई योगाभ्यासी जनहरू रहन्छन् मगनमा॥
यसै देखी हुन्छन् विविध हयमेधादिक अनि। यसैमा छन् सारा श्रुतिविहित कर्मादिक पनि॥१०॥
हजुर्कै सत्ताले रवि शशि उज्यालो गरदछन्। सदा मर्यादामा स्थिरतर रहेका जलधि छन्॥
चलेका छन् हर्दं प्रबल यमका शासन पनि। न जाने यो सत्ता कति तिर पुगेको छ जननि॥११॥
रजोमूर्ति ब्रह्मा कन पनि मिल्यो ब्रह्मपदवी। लिदा छन् स्वर्वैद्यप्रभृति पनि ती याज्ञिक हवि॥
बने ती गोत्रघ्नप्रवर पनि स्वर्गाधिप अहो। हजुर्कै सेवाको जननि सव यो सत्फल न हो॥१२॥
जगत्का स्वामी हुन् पृथिवीपति हुन् वा नृपति हुन्। सुरर्षि ब्रह्मर्षि प्रथितगुणराजर्षि यदि हुन्॥
सुधी हुन् योगी हुन् धनि गुणिधनुर्धारि हुन्। निदान्मा आहारा जननि हजुरैका सकल हुन्॥१३॥
पढून् विद्या जोडून् धन जन बनून् धार्मिक धनी। फिरून् गर्दै लोकोत्तर चरित नानाविध पनी॥
पछी ता आखिर्मा जननि हजुरैमा सकलले। न होमी यो चोला सहज सुख पाइन्न कहिले॥१४॥
पिता माता भ्राता सुहृद अथवा बान्धव अरू। बधू छोरा नाती दिदि बहिनी मामा फुपुहरू॥
हुँदैनन् यी कोही पनि जननिके आखिर महाँ। हजुरैको खाली शरण गरनू पर्दछ यहाँ॥१५॥
सुखी होस् दुःखी होस् सुमति यदि होस् वा कुमति होस् किरो होस् पक्षी होस् पशु तृण लता होस् मनुज होस्।
सबै माथी देख्छू जननि समदृष्टी हजुरको हजुर्देखी वेगपरम गति अर्को छ कसको॥१६॥
न ता इच्छा राख्छू धनजनकलत्रादि सुखको न ता गर्छू चाहा अमरनगरीका सफरको।
म माग्छू यै खाली चरण बिच पस्त्री जननिका सदा झल्कोस् मन्मा यही हजुरको चिन्मय शिखा॥१७॥
विलास्पुर्को वासी विषयसुखमा लम्पट अति। सदाको अज्ञानी पशुसदृश मोहाकुलमति॥
स्वभक्त श्रीरत्नद्विजकन लिनूहोस् शरणमा। क्षमा पाऊँ मातर् कसुर सब पर्छू चरणमा॥१८॥

॥ शुभम्॥

# ८. चौसट्ठी लिङ्गयात्रा❀

(स्कन्दपुराण अन्तर्गत हिमवत्खण्डका ९० अध्यायदेखि १६३ अध्यायसम्म वर्णन गरिएका नेपालमण्डलका ६४ लिंगहरूको यात्रा र ती ती लिंगहरूको विशेषता यस शीर्षकमा प्रकट गरिएको छ। यस अनुसार नरनारीहरूले दुम्जाको कुशेश्वर शिवलिंगदेखि आरम्भ गरी पशुपतिक्षेत्र अन्तर्गत देवपत्तनमा रहेका रुद्रागारेश्वर शिवलिंगसमेत गरी ६४ शिवलिंगको अवस्थिति र महिमा यहाँ बताइएको छ।

श्रीगणेशाय नमः ॥

आर्यातीर्थमा स्नान गरी पशुपति गुह्येश्वरीको दर्शन गरी श्रीसूर्यविनायकको दर्शन गरी चौंसट्ठीलिङ्गयात्रा प्रारम्भ श्री आदिलिङ्ग।

१ कुशेश्वर – यी देवतादेखि पूर्व दुई सय धनुमा लीलावती कौशिकाको सङ्गममा दुर्गा तीर्थ छ यी देवता ब्रह्माले सृष्टि गर्नाका इच्छाले महादेवको आराधना गर्दामा उत्पन्न भएका अन्तर्वेदीमा वहन्या भ्रष्ट नाम भएका ब्राह्मण फाल्गुन कृष्ण अमावास्यामा यी देवताको दर्शन गरी रात्रीमा मर्नाले मुक्त भएका छन् विरूपाक्षले दर्शन गरेको मिति माघ कृष्ण चतुर्दशीका दिनमा ॥ यो जगा चित्रकुट पर्वतमा कुलपीठ कहलाउँछ भाषामा दुमजा भन्दछन् ॥ यी देवतालाई कुशेश्वर भन्दछन् नेपालदेखि कोश १८×१९॥

२) भीमेश्वर– यी देवता आदिलिङ्गदेखि तीन योजन उत्तर तर्फमा छन् ॥ यी देवतादेखि २१ कोश नैर्ऋत्य स्वर्णकौशिकी ताम्रकौशिकीको सङ्गममा देवतीर्थ छ यी देवता शुम्भासुर दैत्यका भयले भाग्याका देवताहरूले ध्यान गर्दा उत्पन्न भएका हुन्। यस तीर्थमा स्नान गर्नाले र यी देवताको पूजा गर्नाले श्राद्धका दिनमा बारम्बार रवानाका पापले सूकरयोनिमा भएका रुद्रशर्मा ब्राह्मण माघ कृष्ण चतुर्दशीमा दर्शन गर्नाले मुक्त भएका छन् ॥ विरूपाक्षले दर्शन गरेको मिति माघ शुक्ल पूर्णिमा योजगा ताम्रचुड पर्वत कहलाउँछ भाषामा दोलखा भन्दछन् नेपालदेखि कोश २०

३) काफीश्वर– यी देवता भीमेश्वरदेखि तिन योजन पश्चिम तर्फमा छन् यी देवतादेखि सय धनु पश्चिम तर्फमा स्वर्ण कौशिकी नदी र शैलवती नदीको सङ्गममा स्वर्ण तीर्थ छ यी देवता काफि मुनिले ध्यान गर्दा उत्पन्न भप्राका कुरूपा नाम गन्याका म्लेच्छकी स्त्री फाल्गुन कृष्ण अमावास्यामा यस तीर्थमा स्नान गर्नाले मुक्त भएकी छ॥ विरूपाक्षले दर्शन गरेको मिति माघ कृष्ण २ का दिनमा यो जगा ककुदाद्रि पर्वत कहलाउँछ भाषामा वाह विस्या भन्दछन् नेपालदेखि कोशः ॥–॥

४) कश्यपेश्वर– यी देवता काफीश्वरदेखि तीन योजन पश्चिम तर्फमा छन् यी हात पश्चिम तर्फमा सरस्वती कुण्ड कश्यपले स्नान गरेको काश्यप तीर्थ छ यी देवता कश्यप ऋषिले सृष्टि गर्नाका इच्छाले ध्यान गर्दामा उत्पन्न भएका नपुंसक म्लेच्छले आषाढ कृष्ण ८ मा यस तीर्थमा स्नान र यी देवताको दर्शन गरी मुक्त भएको छ विरूपाक्षले दर्शन गरेको मिति माघ कृष्ण ३ का दिनमा यो जगा ककुदाद्रि पर्वत कहलाउछ भाषामा मण्डन भन्दछन् ॥ नेपाल देखि कोश ॥

५) फटिकेश्वर – यी देवतादेखि १०० धनु ईशान तर्फमा चन्द्रकान्ती नदी हिमश्रावा नदीको सङ्गममा कान्ति तीर्थ छ यी देवता ब्रह्माले ध्यान गर्दा उत्पन्न भएका धर्मदास नाउ भएका ब्राह्मण आश्विन शुक्ल पूर्णिमामा यस तीर्थमा स्नान र यी देवताको दर्शन गरी रात्रिमा मर्नाले मुक्त भएका छन् विरूपाक्षले दर्शन गरेको मिति माघ कृष्ण ४ का दिनमा यो जगा काकन्द पर्वत कहलाउँछ॥ भाषामा फटक शीला भन्दछन् नेपाल देखि कोश॥

६) चण्डेश्वर – देवता फटिकेश्वरदेखि दुई कोश आज कालका हिसाबले ४ कोश पश्चिम तर्फमा छन् यी देवतादेखि दुई पाउ दक्षिण तर्फमा रूपवतीको सङ्गममा उग्रतीर्थ छ यी देवता च्वन ऋषिले ध्यान गर्दा उत्पन्न भएका चण्डनाम गरेका दैत्यले चैत्र नवमीमा यस तीर्थमा स्नान र यी देवताको दर्शन गर्नाले स्वर्गादि सकल लोकलाई जिति पछि देविले मार्दा मुक्त भएको छ विरूपाक्षले दर्शन गरेको मिति माघ कृष्ण ५ का दिनमा यो जगा स्कन्द गिरि पर्वत कहलाउँछ भाषामा वनेपा भन्दछन् नेपालदेखि कोश।

७) धनेश्वर – यी देवता चण्डेश्वरदेखि १ कोश दक्षिण तर्फमा छन् यी देवतादेखि एक पाउ उत्तर तर्फमा सोहि उग्र तीर्थ छ यी देवता भृगु ऋषिले ध्यान गर्दा उत्पन्न भएका ऋतु ऋषिका उपदेशले शिवदास नाम भएको वैश्य वैशाख कृष्ण चतुर्दशीमा यी देवताको दर्शन गर्नाले धन पाई अन्त्यमा मुक्त भएको छ विरूपाक्षले दर्शन गरेको मिति माघ कृष्ण ६ का दिनमा यो जगा रौद्र गिरि पर्वत कहलाउँछ भाषामा बनेपा भन्दछन् नेपालदेखि कोश।

---

❀ चौसट्ठीलिङ्गयात्रा हिमवत्खण्डमा बताइए अनुसार कुनै नेपाली विद्वान्ले पुरानो शैलीको नेपाली भाषामा तयार गरेको देखिन्छ। तत्कालीन भाषाप्रयोगको इतिहास समेत जीवितै रहोस् भन्ने सदाशयताले भाषिक परिवर्तन नगरेरै यहाँ समावेश गरिएको छ।)

८) विकटेश्वर – यी देवता धनेश्वरदेखि ६००० धनु पश्चिम तर्फमा छन् यी देवतादेखि १५ हात पूर्व तर्फमा २ नदीका सङ्गममा पुष्प तीर्थ ६ यी देवता पुष्प तीर्थको जलपान गर्नाले ज्ञानि भएको विकट नाम भएका म्लेच्छले विरक्त भै ध्यान गर्दा उत्पन्न भएका यसै विकट नाम भएका म्लेच्छले माघ कृष्ण ३ यामा यी देवताको दर्शन गर्नाले मुक्त भएको छ विरूपाक्षले दर्शन गरेको मिति माघ कृष्ण ७ का दिनमा यो जगा द्रोणाचल पर्वत कहलाउँछ भाषामा सीँगा भन्दछन् नेपालदेखि कोश।

९) इन्द्रेश्वर – यी देवता विकटेश्वरदेखि २ कोश आग्नेय दिशामा छन् यी देवतादेखि ५० धनु पूर्व तर्फमा लिलावती रुद्रावती पद्मावतीको सङ्गममा सचीतीर्थ छ यी देवता गौतम ऋषिले दिएका श्राप मुक्तका निमित्त इन्द्रले ध्यान गर्दाउत्पन्न भएका श्रुतश्रवा नाम भएका ब्राह्मणले भाद्र शुक्ल पूर्णिमामा दर्शन गर्नाले मुक्त भएका छन् विरूपाक्षले दर्शन गरेको मिति माघ कृष्ण ८ का दिनमा यो जगा कुब्ज पर्वत कहलाउँछ भाषामा पनौति भन्दछन् नेपालदेखि कोश।

१०) भालेश्वर – यी देवता इन्द्रेश्वरदेखि १ कोश पश्चिमतर्फमा छन् यी देवतादेखि ५० धनु आग्नेयमा लिलावती नदी र सुखश्रवा नदीको सङ्गममा गन्धवती तीर्थ छ यी देवता सती देवीको शरीरलीकन शिवजीले पृथ्वी धुमदामा सती देवीको निधारको हाड खसीकन उत्पन्न भएका रम्भाले शराप दिएको सुमुख नाम गरेको गन्धर्वले फागुन कृष्ण ८ का दिनमा यी देवताको दर्शन गर्नाले मुक्त भएको छ विरूपाक्षले दर्शन गरेको मिति माघ कृष्ण ९ का दिनमा यो जगा निकुञ्च पर्वत कहलाउँछ भाषामा विहावरको पुछार चिण्डुगानु भन्दछन् नेपालदेखि कोश।

११) गुप्तेश्वर – यी देवता भालेश्वरदेखि २ कोश आजकलका हिसाबले ४ कोश दक्षिण तर्फमा छन् यी देवता देखि २ पाउ नैऋतयमा प्रभाव तीर प्रवानदीको सङ्गममा सिद्ध तीर्थ छ यी देवता वृषासुरका भयले गुफामा आई शिवजीले गुप्त भै कन रहदामा उत्पन्न भयाका भरद्वाजका उपदेशले शिवदास नाम भयाका ब्राह्मणले माघ कृष्ण अमावास्यामा दर्शन गर्नाले मुक्त भयाका छन् विरूपाक्षले दर्शन गरेको मिति माघकृष्ण १० का दिनमा यो जगा कुञ्जाद्रि पर्वत कहलाउँछ। भाषामा आरदेउ भन्दछन् ।नेपालदेखि २०० हात वायव्यमा मनोमती प्रभावती सरस्वतीको सङ्गममा मनश्री तीर्थ छ यी देवता बृहस्पतिले ध्यान गर्दा उत्पन्न भएका उलुक नाम भएको म्लेच्छले मकर सङ्क्रान्तिमा यी देवताको दर्शन गर्नाले मुक्त भएको छ। विरूपाक्षले दर्शन गरेको मिति माघकृष्ण ११ मा यो जगा मुकुन्दगिरि पर्वत कहलाउँछ भाषामा लेले भन्दछन् नेपालदेखि कोश।

१२) चम्पेश्वर – यी देवता तिलेश्वरदेखि २०० धनु अचेलका हिसाबले आधाकोश पश्चिम तर्फमा छन्। यी देवतादेखि २०० धनु दक्षिणमा सरस्वतीतीर्थ छ। यी देवता मनु नाम गरेका ब्राह्मणले ध्यान गर्दा उत्पन्न भयामा विशंकुनाम भएको म्लेच्छले फागुन कृष्ण चतुर्दशीमा यी देवताको दर्शन गर्नाले मुक्त भएको छ विरूपाक्षले दर्शन गरेको मिति माघ कृष्ण १२ का दिनमा यो जगाका सुन्दर पर्वत कहलाउँछ भाषामा लले भन्दछन् नेपालदेखि कोश।

१३) रामेश्वर – यी देवता चम्पकेश्वर देखिन् ३००० धनु (धनु भनेको ४ हातको हुन्छ) पश्चिम तर्फमा छन् अचेलको हिसाबले आधाकोश यी देवतादेखि २५ हात वायव्यमा प्रभावति र सरस्वतीको सङ्गममा प्रभा तीर्थ छ यी देवता परशुरामले तीर्थ वासमा ध्यान गर्दा उत्पन्न भएका उतथ्यऋषिका उपदेशले दुर्वल नाम भएको म्लेच्छ फाल्गुन शुक्ल १४ मा यी देवताको दर्शन गरेकाले मुक्त भएको छ विरूपाक्षले दर्शन गरेको मिति माघ कृष्ण १३ का दिनमा यो जगा त्रिकुट्यचल पर्वत कहलाउँछ भाषामा टिका भैरव भन्दछन् नेपालदेखि कोश।

१४) जालेश्वर – यी देवता कामेश्वरदेखि तिन कोश योजन दक्षिण तर्फमा छन् यी देवतादेखि २ देखि उत्तर तर्फमा वै तरणी नदी घराघर नदीको सङ्गममा कालतीर्थ छ यी देवता कालले ध्यान गर्दा उत्पन्न भएका लम्बकर्ण नाम भएका म्लेच्छले माघ शुक्ल १४ मा यी देवताको दर्शन गरी मुक्त भएकोछ विरूपाक्षले दर्शन गरेको मिति माघ कृष्ण १४ मा यो जगाका सुन्दर पर्वत कहलाउछ भाषामा महाभारत तिन वैनिको लेख भन्दछ नेपालदेखि कोश।

१५) नटारम्भेश्वर – यी देवता कोलेश्वरदेखि तिन योजन पश्चिम तर्फमा छन् यी देवतादेखि १ कोश उत्तर तर्फमा ब्रह्म तीर्थ छ यी देवता ब्रह्मादि देवताले नर्त्तन गर्दा उत्पन्न भएका हुन धेरै प्रति ग्रहली आफूले दान नगर्दा वानर योनी भएका देव शर्मा ब्राह्मण लेजेष्टमा यी देवताको दर्शन गर्नाले मुक्त भएका छन् विरूपाक्षले दर्शन गरेको मिति माघ कृष्ण अमावास्याका दिनमा यो जगा त्रिकुट्यचल पर्वत कहलाउँछ भाषामा मकवानपुरको नजिक महाभारतको लेख भन्दछन् नेपालदेखि कोश।

१६) उद्दालकेश्वर – यी देवता नटरम्भेश्वरदेखि ३ योजन उत्तर तर्फमा छन् यी देवतादेखि २१० हात दक्षिणमा रुद्रकुण्ड तीर्थ छ २५ हातमा यी धर्म गङ्गा तीर्थ छन् यी देवता उद्दालक ऋषिले स्थापन गरेका नारदका उपदेशले स्थुलोदर नाउ

भएका दैत्यले यी देवताको दर्शन गर्नाले मुक्त भएको छ विरूपाक्षले दर्शन गरेको मिति फागुन शुक्ल २ का दिनमा यो जगा व्याघ्र पर्वत कहलाउँछ भाषामा फर्पिङ्ग भन्दछन् नेपालदेखि कोश।

१७) गोपालेश्वर – यी देवता उद्दालकेश्वरदेखि १ कोश उत्तर तर्फमा छन् यी देवतादेखि आधा कोश पूर्वमा गोपनदी र वाग्मदीको सङ्गममा गोपाल तीर्थ छन् १ पाउ इशानमा शिखरणी नदीको र यज्ञ गङ्गाको सङ्गममा व्याघ्रतीर्थ १५ हात नैऋतयमा यज्ञ कुण्ड तीर्थ छ यी देवता विष्णुले तीर्थयात्रा गर्दामा उत्पन्न भएका काञ्चीपुरमा बस्ने सदाचार भएका ब्राह्मण व्याघ्र जेष्ट शुक्ल दशमीका दिन यी देवताको दर्शन गर्नाले अर्का जन्ममा रामशर्मा ब्राह्मणमा र कोशल देशका राजा भै फेरि यिनै देवताको दर्शन गर्नाले मुक्त भएका छन् विरूपाक्षले दर्शन गरेको मिति फाल्गुन शुक्ल ३ का दिनमा यो जगा मकयचल पर्वत कहलाउँछ भाषामा फर्पिङ्ग भन्दछन् नेपालदेखि कोश।

१८) चम्पकेश्वर – यी देवता गोपालेश्वरदेखि २ योजन आजकालका हिसाबले कोश ६ पश्चिम तर्फमा छन् यी देवतादेखि १०० हाथ दक्षिण तर्फमा चन्द्रकान्ती नदी रत्नकान्ति नदीको सङ्गममा ब्रह्मतीर्थ छ यी देवता द्वारकापुरको मन्त्री सुबाहुले चापाको फुलटिपदा उत्पन्न भएका अगम्य गमनका पापले कुष्टरोग भएका कौत्सुक नाम ब्राह्मणले जमदग्निका उपदेशले चैत्र कृष्ण १३ मा दर्शन गर्नाले मुक्त भएका छन् विरूपाक्षले दर्शन गरेको मिति फाल्गुन शुक्ल ५ का दिनमा यो जगा वज्रपर्वत कहलाउँछ भाषामा चितलाङ् विर्श खेल भन्दछन् नेपालदेखि कोश।

१९) उन्मत्तेश्वर – चम्पकेश्वरदेखि तिन कोश पश्चिम तर्फमा छन् यी देवतादेखि १५ हात पूर्वमा चित्रकान्ति नदी र स्वर्णवति नदीको सङ्गममा स्वर्ग तीर्थ छ यी देवता अन्तर वेदिमा वहन्या विष्णुभद्र नाम भएका ब्राह्मणले ध्यान गर्दा उत्पन्न भएका मैत्र नाम गरेका मुनिका उपदेशले घुरघुर नाम भएको राक्षस फाल्गुन शुक्ल ४ मा यी देवताको दर्शन गरी मुक्त भएकोछ विरूपाक्षले दर्शन गरेको मिति फागुन शुक्ल ६ का दिनमा यो जगा मयुर पर्वत कहलाउँछ भाषामा टिष्टुङ्‌ भन्दछन् नेपालदेखि कोश।

२०) नन्दीकेश्वर – यी देवता उन्मत्तेश्वरदेखि ४०० धनु आग्नेय तर्फमा छन् यी देवतादेखि १५ हात दक्षिणमा रत्नकान्ती नदी र स्वर्ण प्रभाको नदीका सङ्गममा नन्दी तीर्थ छ यी देवता महादेवका श्रापले मनुष्य जन्मभएका नन्दीले ध्यान गर्दा उत्पन्न भएका अर्द्धाङ्ग भएको म्लेच्छ वैशाख शुक्ल १५ मा यी देवताको दर्शन गरी मुक्त भएको छ विरूपाक्षले दर्शन गरेको मिति फाल्गुन शुक्ल ७ का दिनमा यो जगा नन्द पर्वत कहलाउछ भाषामा टिष्टुङ्‌ भन्दछन् नेपालदेखि कोश।

२१) गोखुरेश्वर – यी देवता नन्दीकेश्वरदेखि उभो एक कोश नैऋत्य तर्फ पर्वतका कोखमा छ यी देवतादेखि १५ हात आग्नेयमा गोतीर्थ छ ती देवता दधिकर्ण नाम भएका अहीरका गाईले खुरले खोर्सदामा उत्पन्न भएका एहि दधि कर्ण नाम भएको अहिर यी देवताको दर्शन गर्नाले मुक्त भएको छ विरूपाक्षले दर्शन गरेको मिति फाल्गुन शुक्ल ८ का दिनमा गो जगा कसेरु पर्वत कहलाउँछ भाषामा कृछल कार्किछाप भन्दछन् नेपालदेखि कोश।

२२) पाण्डुकेश्वर – यी देवता गोखुरेश्वरदेखि २ कोश पश्चिम तर्फमा छन् यी देवतादेखि १०० वायव्यमा ऋक्षवान् पर्वतदेखि आयाकी रेविकानदी र भद्रकूटपर्वतदेखि आयाकी रेतोवतीका सङ्गममा भद्रतीर्थ छ यी देवता देखि १ पाउ दक्षिणमा नारद तीर्थ छ यी देवता मरीचिकापुत्र पण्डु नाम भएका ब्राह्मणले तीर्थ यात्रामा ध्यान गर्दा उत्पन्न भएका शंकुकर्ण नाम भएको दैत्य नारदका उपदेशले यी देवताको दर्शन गरी मुक्त भएको छ विरूपाक्षले दर्शन गरेको मिति फाल्गुन शुक्ल ६ का दिनमा यो जगा ऋक्षवाण पर्वत कहलाउछ भाषामा पालुङ भन्दछन् नेपालदेखि कोश।

२३) कूटेश्वर – यी देवता पाण्डुकेश्वर देखि १ योजन पश्चिम तर्फमा छन् यी देवतादेखि १ कोशतल वायव्यमा गण्डाद्रि पर्वतदेखि आएकी गण्डवतिनदी र वतकान्ति नदीको सङ्गम गालब तीर्थ छ यी देवता गालब ऋषिले ध्यान गर्दा उत्पन्न भएका विराट नगरका सुदर्शन नाम भएका राजा कृष्णसारमृग भएका माघकृष्ण ५ मा यी देवताको दर्शन गरी मुक्त भएका छन् विरूपाक्षले दर्शन गरेको मिति फाल्गुन शुक्ल दशमीका दिनमा यो जगा चित्रकूट पर्वत कहलाउँछ भाषामा आग्रा महादेउखर भन्दछन् नेपालदेखि कोश।

२४) असितेश्वर – यी देवता कूटेश्वरदेखि डेढ योजन पश्चिम तर्फमा छन् यी देवतादेखि एक पाउ पश्चिममा शक्रवती र भानुमती नदीको सङ्गममा असीत तीर्थ छ यी देवता असित ऋषिले शिलाको लिङ्ग स्थापन गर्दा उत्पन्न भएका शुद्रनाम भएका मुनिका उपदेशले कुक्कुटवक्रनाम भएको शुद्र फाल्गुन शुक्ल ६ का दिन यी देवताको दर्शन गर्नाले मुक्त भएको छ विरूपाक्षले दर्शन गरेको मिति माघ शुक्ल १३ यो जगा सुभद्र पर्वत कहलाउँछ भाषामा महेसाखोला भीर पानी देखि मुनि महादेवव्यासि भन्दछन् नेपालदेखि कोश।

२५) भैरवेश्वर – यी देवता असितेश्वरदेखि डेढ योजन उत्तरतर्फमा छन् यी देवताका नजीकमा सक्रमती र त्रिशूल गङ्गाको सङ्गममा भैरव तीर्थ छ यी देवता शिवजीले भैरव स्वरूपभै संसारको संहार गरी तपस्या गर्दामा उत्पन्न भएका धर्म

शर्माका उपदेशले यकाक्ष नाम भएको वैश्य यी देवताको दर्शन गर्नाले मुक्त भएको छ विरूपाक्षले दर्शन गरेको मिति फागुन शुक्ल १४ का दिनमा यो जगा निलकूट पर्वत कहलाउँछ भाषामा देविघाट भन्दछन् नेपालदेखि कोश।

२६) ब्रह्मेश्वर – यी देवता भैरवेश्वरदेखि योजनपूर्व तर्फमा छन् यी देवतादेखि १०० धनु दक्षिण तर्फमा मृगेन्द्र पर्वतदेखि आएकी ब्रह्मगङ्गा र ब्रह्मपदीको सङ्गममा ब्रह्मतीर्थ छ र देवता सृष्टि गर्नाका ईच्छाले ब्रह्माले ध्यान गर्दा उत्पन्न भएका यस तीर्थमा मर्नाले कोही म्लेच्छ राक्षस अर्का जन्ममा ब्रह्मशर्मा ब्राह्मण र वाणासुर दैत्यभै फाल्गुन शुक्ल १५ मा यिनै लिङ्गमा प्रवेश गरी ब्रह्मशर्मा मुक्त भया वाणासुर पनि यिनै देवताको दर्शन गरी मुक्त भएको छ विरूपाक्षले दर्शन गरेको मिति फागुन शुक्ल १५ मा यो जगा एक शृङ्गाचल पर्वत कहलाउँछ भाषामा कपिलास भन्दछन् नेपालदेखि कोश।

२७) स्कन्देश्वर – यी देवता ब्रह्मेश्वरदेखि डेढ कोश पूर्व तर्फ चन्द्रकान्ति न्त्युपलाचलपर्वतका उधो दक्षिण तर्फमा छन् यी देवतादेखि १५ हात दक्षिणामा चन्द्रदीप्ति नदी र सिद्धरसले युक्त भएका जगामा स्कन्द तीर्थ छ यी देवता तारकासुरलाई मार्ना निमित्त स्कन्दले ध्यान गर्दा उत्पन्न भएका छन् विरूपाक्षले दर्शन गरेको मिति फागुन शुक्ल २ का दिनमा यो जगा चन्द्रकान्त्युपला चल पर्वत कहलाउँछ भाषामा कपिलास डाँडावारि भन्दछन् नेपालदेखि कोश।

२८) शतरुद्रेश्वर – यी देवतादेखि डेढ पाउ पूर्व तर्फमा मृगेन्द्र शिखरदेखि आएकी विश्वगङ्गा र जेष्टिलाका सङ्गममा नृसिंह तीर्थ वाग्द्वार छ यी देवता नृसिंहले ध्यान गर्दा उत्पन्न भएका सूर्य केतु नाम भएका राजाले माघ शुक्ल ८ का दिन यी देवताको दर्शन गरी मुक्त भएका छन् विरूपाक्षले दर्शन गरेको मिति फागुन कृष्ण २ का दिनमा यो जगा मृगेन्द्र पर्वत कहलाउँछ भाषामा शिवपुरी भन्दछन् नेपालदेखि कोश छ।

२९) काकेश्वर – यी देवता शत रुद्रेश्वरदेखि तिनकोश पूर्व तर्फमा छन् शतरुद्रेश्वरदेखि २ कोश पूर्वमा सुन्दरी तीर्थ र सुन्दरी देवी छन् यिनै देविदेखि कोश एकमा आकाश गङ्गा तीर्थ र काकेश्वर छन् यी देवता शिवजीले गूढ रूप भएमा पार्वतीले कौवाको रूपधारी देवताहरूलाई देखा उदामा उत्पन्न भएका सुष्कोदर नाम भएका म्लेच्छले भाद्रशुक्ल ८ मा यी देवताको दर्शन गर्नाले मुक्त भएको छ विरूपाक्षले दर्शन गरेको मिति फाल्गुन शुक्ल ५ को दिनमा यो जगा सरकंकट पर्वत कहलाउँछ भाषामा काकेश्वर भन्दछन् नेपालदेखि कोश पाँच।

३०) मणिचूडेश्वर – यी देवता काकेश्वरदेखि आधा कोश आजकालका हिसाबले कोश १ पूर्व तर्फमा मणी ह्रद तीर्थ छ यी देवता मणिह्रदैमा छन् यी देवता वज्र योगिनीका उपदेशले देवताहरूले ध्यान गर्दा उत्पन्न भएका कृशाङ्ग नाम भएका किरतिले चैत्र शुक्ल पूर्णिमामा यी देवतालाई स्पर्श गरी रात्रीमा मर्नाले मुक्त भएको छ विरूपाक्षले दर्शन गरेको मिति फाल्गुन कृष्ण ७ का दिनमा यो जगा मणिचूर पर्वत कहलाउँछ भाषामा मणिचूर पर्वतको थुमका भन्दछन् नेपालदेखि कोश।

३१) योगेश्वर – यी देवता मणि चुडेश्वर देखि १ कोश दक्षिणका उधो भागमा छन् यी देवतादेखि आधा पाउ दक्षिणमा योग कुण्ड र योग गङ्गा तीर्थ छन् यी देवता ब्रह्माले ध्यान गर्दा उत्पन्न भएका कलिङ्ग देशका राजा देवीदास नाम भएका नारदका उपदेशले आश्विन कृष्ण नवमीका दिनमा यी देवताको दर्शन गरी मुक्त भएका छन् विरूपाक्षले दर्शन गरेको मिति फागुन कृष्ण ८ का दिनमा यो जगा मणिचूड पर्वत कहलाउँछ भाषामा साँखु भन्दछन् नेपालदेखि कोश पाँच।

३२) नारायणेश्वर – यी देवता योगेश्वरदेखि एककोश पूर्व तर्फमा छन् नारायण ह्रद तीर्थमा यी देवता छन् यसै तीर्थलाई कर्णह्रद तीर्थ भन्छन् यी देवता नारायणले ध्यान गर्दा उत्पन्न भएका हुन् सभामा साक्षी वसी केही न बोलेका श्रापले वैरोभएको किराति माघ कृष्ण १४ का दिनमा यस तीर्थको जल स्पर्श गर्नाले मुक्त भएको छ विरूपाक्षले दर्शन गरेको मिति फागुन कृष्ण दशमीका दिनमा यो जगा गन्धमादन पर्वत कहलाउँछ भाषामा तप्स्या गानु बोध्यानि फेदि भन्दछन् नेपालदेखि कोश।

३३) ज्योतिर्लिङ्गेश्वर – यी देवता नारायणेश्वरदेखि १००० धनु पश्चिम तर्फमा छन् यी देवतादेखि डेढ पाउ दक्षिणमा चित्र ह्रददेखि आयकी रत्नावती र मणिमतिको सङ्गममा योग तीर्थ छ यी देवता सनक ऋषिले (ध्यान गर्दा उत्पन्न भएका शुचिमुख नाम भएका ब्राह्मण हारीत मुनिका उपदेशले वैशाख शुक्ल पूर्णिमाका दिनमा यी देवताको दर्शन गर्नाले मुक्त भएका छन् विरूपाक्षले दर्शन गरेको मिति फागुन कृष्ण १३ यो जगा कामधेनु पर्वत कहलाउछ भाषामा साँखु भन्दछन् नेपालदेखि कोश ५।

३४) रत्नचूडेश्वर – यी देवता ज्योतिर्लिङ्गेश्वरदेखि २ कोश पश्चिम तर्फ रत्नह्रद तीर्थमा छन् यी देवता ब्रह्माले ध्यान गर्दा उत्पन्न भएका पिशाच नाम गरेका ब्राह्मणले आषाढ शुक्ल १५ मा यी देवताको दर्शन गर्नाले मुक्त भएका छन् विरूपाक्षले दर्शन गरेको मिति फागुन कृष्ण १४ का दिनमा यो जगा डोलागिरि पर्वत कहलाउँछ भाषामा महादेव पोखरि भन्दछन् नेपालदेखि कोश छ ६।

३५) वागीश्वर- यी देवता रत्न चूडेश्वरदेखि एक कोश उधो दक्षिण तर्फमा छन् यी देवतादेखि १०० धनु आग्नेयमा विरगङ्गामा विरगङ्गा तीर्थ छ यी देवता वाक् नाम भएका ब्राह्मण श्रावण शुक्ल १५ मा यी देवताको दर्शन गरेको मिति फागुन कृष्ण अमावास्याका दिनमा यो जगा दोलागिरि पर्वत कहलाउँछ भाषामा चाङ्गीश्वरी भन्दछन् नेपालदेखि कोश ५।

३६) कीलेश्वर - यी देवता वागीश्वरीदेखि २ कोश पश्चिम तर्फमा छन् यी देवतादेखि मुरनाउ भएका दैत्यले दोलागिरि पर्वतलाई उखेल्न लाग्दा यसै पर्वतलाई विष्णुले ध्यान गर्दा उत्पन्न भएका छन् सुग्रीव नाम भएको किन्नर आषाढ शुक्ल १५ मा यी देवताको दर्शन गरी मुक्त भएको छ विरूपाक्षले दर्शन गरेको मिति चैत्रशुक्ल द्वितीयाका दिनमा यो जगा दोलागिरि पर्वत कहलाउँछ भाषामा चांगु भन्दछन् नेपालदेखि कोश ४।

३७) वाल्मीकेश्वर - यी देवता कीलेश्वरदेखि २ कोश आग्नेयमा भद्राचल पर्वतदेखि आएकी भद्रानदी र वीरानदीको सङ्गममा वीरभद्र तीर्थ छ यी देवता वाल्मीकि ऋषिले तीर्थ यात्रा गर्दामा स्थापना गर्दा उत्पन्न भएका कोही म्लेच्छले यी देवताको दर्शन गरी मर्नाले अर्का जन्ममा विश्वकेतु राजा भै पौष शुक्ल १५ मा यिनै देवताको दर्शन गरी मर्नाले मुक्त भएको छ विरूपाक्षले दर्शन गरेका मिति चैत्र शुक्ल तृतीयाका दिनमा यो जगा शुभोद पर्वत कहलाउँछ भाषामा भादगाउँ हनुमान घाट भन्दछन् नेपालदेखि कोश।

३८) मङ्गलेश्वर - यी देवता वाल्मीकेश्वरदेखि २०० धनु पश्चिम तर्फमा छन् यी देवतादेखि २०० धनु दक्षिण भद्रनदीमा मङ्गल तीर्थ छ यी देवता मङ्गल ऋषिले ध्यान गर्दा उत्पन्न भएका ऊर्ध्वकेश नाम भएको म्लेच्छले भाद्र कृष्ण १४ मा चापाको फूल चढाई पूजा गरी रात्रीमा मर्नाले मुक्त भएको छ विरूपाक्षले दर्शन गरेको मिति चैत्र शुक्ल ५ का दिनमा यो जगा शुभोदपर्वत कहलाउँछ भाषामा भादगाउँ भन्दछन् नेपालदेखि कोश ४।

३९) विमलेश्वर - यी देवता मङ्गलेश्वर देखि १००० धनु आग्नेय तर्फमा छन् यी देवतादेखि आधा पाउ पश्चिममा विमल गङ्गा र आर्की नदीको सङ्गममा विमलोदक तीर्थ छ यी देवता विमल नाम भएका ऋषिले ध्यान गर्दामा उत्पन्न भएका यिनै विमला नाम भएका ऋषिले मार्ग कृष्ण अमावास्याका रात्रिमा यी देवताको दर्शन गरी मर्नाले मुक्त भएका छन् विरूपाक्षले दर्शन गरेको मिति शुक्ल ७ का दिनमा यो जगा निकुण्डा पर्वत कहलाउँछ भाषामा सिपाडोल भन्दछन् नेपालदेखि ५।

४०) अनन्तेश्वर - यी देवता विमलेश्वरदेखि १ कोश आग्नेय तर्फमा छन् यी देवता देखि १०० धनु उत्तरमा ऋषि तीर्थ छ यी देवता बृहदग्नि ऋषिले शौच गर्ने माटो खन्दामा उत्पन्न भएको उल्कास्य नाम भएको म्लेच्छले चैत्रकृष्ण ८ मा यी देवताको दर्शन गरी आफ्ना घर आउँदा खेरि बाटामा मर्नाले मुक्तिभएको छ विरूपाक्षले दर्शन गरेको मिति चैत्रशुक्ल ८ का दिनमा यो जगा ऋष्याश्रम पर्वत कहलाउँछ भाषामा अनन्तलिङ्ग भन्दछन् नेपालदेखि कोश ४।

४१) विश्वरूपेश्वर - यी देवता अनन्तेश्वर देखि एक पाउ दक्षिण तर्फमा छन् यी देवतादेखि २४ धनु उत्तरमा वृद्ध गङ्गातीर्थ छ यी देवता श्रुति श्रवानाम भएको ब्राह्मणले ध्यान गर्दा उत्पन्न भएमा त्रिशिरा नाम भएको पक्षीराज वेदऋषिका उपदेशले वैशाख शुक्ल १४ मा यी देवताको दर्शन गर्नाले मुक्त भएको छ यो जगा ऋष्याश्रम पर्वत कहलाउँछ भाषामा तर्पागाल भन्दछन् नेपालदेखि कोश ३।

४२) सोमेश्वर - यी देवता विश्वरूपेश्वरदेखि २ पाउ पश्चिम तर्फमा छन् यी देवतादेखि १ पाउ पूर्वमा कोश गङ्गाको र पद्मनदीको सङ्गममा सोम तीर्थ छ यी देवता दक्ष प्रजापतिको सराप भएमा चन्द्रमाले ध्यान गर्दा उत्पन्न भएका इन्द्रको सरापले मनुष्य देह भएको सुखश्रवा नाम भएको गन्धर्व नारदका उपदेशले कार्तिक शुक्ल १४ मा यी देवताको दर्शन गरी मुक्त भएको छ विरूपाक्षले दर्शन गरेको मिति चैत्रशुक्ल ११ का दिनमा यो जगा धर्म रूप शैल कहलाउँछ भाषामा सोमलिङ्गयर भन्दछन् नेपालदेखि कोश ३।

४३) गोभराटेश्वर - यी देवता सोमेश्वरदेखि ६०० धनु दक्षिण तर्फमा छन् यी देवतादेखि ५० धनु आग्नेयमा चन्द्रवताद्रि पर्वतका गुफामा रह्याकि कामधेनुका सिङदेखि निक्ल्याकि गोशृङ्गी नदी र चक्रनेमि पर्वतदेखि उत्पन्न भएकी चक्रावती नदीको सङ्गममा गोशृङ्ग पर्वत छ यी देवता शृङ्गी ऋषिले कामधेनुको गोबरको लिङ्ग वनाइ स्थापन गर्दामा उत्पन्न भएका नपुन्सक वैश्यले कोही मुनिका उपदेशले पौष शुक्ल १५ मा यी देवताका दर्शन गरी मुक्त भएको छ विरूपाक्षले दर्शन गरेको मिति चैत्र शुक्ल १२ का दिनमा यो जगा चक्रनेमि पर्वत कहलाउँछ भाषामा लुवु भन्दछन् नेपालदेखि कोश ३।

४४) भृङ्गेश्वर - यी देवता गोभराटेश्वरदेखि २ कोश नैऋतयमा छन् यी देवतादेखि १०० धनु दक्षिणमा सिद्धरस कुण्ड तीर्थछ १० हात इशानमा अर्को ज्ञानवापी तीर्थ छ दुईपाउ पूर्वमा अर्को नागह्रद तीर्थ छ यी देवता महादेवले सराप दियाका भृङ्गिले मनुष्यको देह भै ध्यान गर्दा उत्पन्न भएका उडिशानगरका नहुष नाउ भएका राजा ब्राह्मणका सरापले सर्पको

योनि भएका वैशाख १५ मा यी देवताको स्पर्श गर्नाले मुक्त भएका छन् विरूपाक्षले दर्शन गरेको मिति चैत्र शुक्ल १४ का दिनमा यो जगा नागकूट पर्वत कहलाउँछ भाषामा सुनागुठि भन्दछन् नेपालदेखि कोश २।

४५) त्रिलिङ्गेश्वर – यी देवता भृङ्गेश्वरदेखि १ कोश उत्तर तर्फमा छन् यी देवतादेखि १० हात इशानमा मुनि कुण्ड तीर्थ छ यी देवता त्रितयनामा मुनिले ध्यान गर्दामा उत्पन्न भएका तालजंघ नाम भएका ब्राह्मण पूर्व जन्मका पापले चौर वृत्ति भएका मार्ग कृष्ण १४ का दिनमा यी देवताको स्पर्श गरी मर्नाले मुक्त भएका छन् विरूपाक्षले दर्शन गरेको मिति चैत्र शुक्ल पूर्णिमाका दिन यो जगा ललितारण्य कहलाउँछ भाषामा पाटन भन्दछन् नेपालदेखि कोश १।

४६) कुपितेश्वर – यी देवताको त्रिलिङ्गेश्वरदेखि ३० धनु इशान तर्फमा छन् यी देवतादेखि पश्चिम... धनु इशानमा उदकुण्ड तीर्थ छ यी देवता द्वितय नाम भएका ऋषिले ध्यान गर्दा उत्पन्न भएका शठनाम भएको किराति माघ कृष्ण १४ मा यी देवताको स्पर्श गरी मर्नाले मुक्त भएको छ विरूपाक्षले दर्शन गरेको मिति चैत्रकृष्ण २ का दिनमा यो जगा ललितारण्य कहलाउँछ भाषामा पाटन भन्दछन् नेपालदेखि कोश १।

४७) सर्वेश्वर – यी देवता कुपितेश्वरदेखि ४० धनु उत्तर तर्फमा छन् यी देवता देखि २ हात इशानमा कुम्भेश्वर छन् यी देवतादेखि १५ हात उत्तरमा गौरीकुण्ड तीर्थ छ यस तीर्थदेखि २० हात वायव्यमा नागह्रद तीर्थ छ यी देवता गौरीले कश्यपले आराधना गर्दा उत्पन्न भएका आफ्ना पतिले त्याग गरेकी विरुधा नाम भएकी किरातिनी जन्तुलेखाओस भनी यसै ललितारण्य वनमा प्रवेश गर्दा कार्तिक शुक्ल १४ मा यी देवताको दर्शन गर्नाले मुक्त भएकी छ विरूपाक्षले दर्शन गरेको मिति चैत्रकृष्ण ४ का दिनमा यो जगा सोही वन कहलाउँछ भाषामा पाटन भन्दछन् नेपालदेखि कोश १।

४८) गोलोकेश्वर – यी देवता सर्वेश्वरदेखि ३ कोश पश्चीम तर्फमा छन् यी देवतादेखि १० धनु पश्चिमा रुद्र तीर्थ छ यी देवता ब्रह्माले ध्यान गर्दा उत्पन्न भएका उज्जयन्ताचल पर्वतमा वस्न्या कैकरनाम भएको राक्षस ज्येष्ठ १४ मा यी देवताको दर्शन गरी वर्ष दिन सम्म यिनै देवताको सेवा गरी मर्नाले मुक्त भएको छ विरूपाक्षले दर्शन राजाको मिति चैत्र कृष्ण ६ का दिनमा यो जगा नन्दभद्र शैल पर्वत कहलाउँछ भाषामा वल्खुखोलाका किनारामा नैकापको थुमका भनि भन्दछन् नेपालदेखि कोश १।

४९) मीनेश्वर – गोलोकेश्वरदेखि कोश दक्षिण तीर्थमा मीन तीर्थ छ यस तीर्थमा विष्णुले मीन शरीर लिएको यस तीर्थदेखि १ कोश पश्चिममा मातृ तीर्थ छ यस तीर्थमा सुमेधा नाम भएको वैश्य मुक्त भएको छ मातृतीर्थदेखि १०० धनु वायव्यमा चन्द्रकुप तीर्थ छ।

५०) चन्दनभराटेश्वर – यी देवता मीनतीर्थ देखि २००० धनु पश्चिम तर्फमा छन् यी देवतादेखि १ पाउ उत्तरमा भस्मगङ्गा तीर्थ छ यी देवता शिवजीले पार्वतीसँग क्रीडा गर्दामा उत्पन्न भएका ब्रह्मनन्द नाम भएका ब्राह्मण महादेवका उपदेशले मरेको छोरालाई जियाइ कार्तिक शुक्ल ९ मा यी देवताको दर्शन गरी मुक्त भएका छन् विरूपाक्षले दर्शन गरेको मिति चैत्र कृष्ण ८ का रात्रिमा यो जगा चन्दनगिरि पर्वत कहलाउँछ भाषामा मातातीर्थ महादेव गाउँ भन्दछन् नेपालदेखि कोश २

५१) यक्षेश्वर – यी देवता चन्दन मण्टेश्वरदेखि २ कोश उत्तर तर्फमा छन् यी देवतादेखि १५ धनु आग्नेयमा यक्षकुण्ड तीर्थ र नन्दी नाम गरेको नदीमा नदीतीर्थ छ यी देवता विष्णुले आराधना गर्दा उत्पन्न भएका कुवेरको द्वारपाल हयग्रिव नाम गरेको यक्ष कुवेरले नीकाली दिएकोमा माघ कृष्ण १४ का रात्रीमा यी देवताको दर्शन गरी मर्नाले मुक्त भएको छ विरूपाक्षले दर्शन गरेको मिति चैत्रकृष्ण एकादशीका दिनमा यी देवतालाई आदेश्वर भन्दछन् यो जगा उसीरविर पर्वत कहलाउँछ भाषामा इचंगु हलचोक भन्दछन् नेपालदेखि कोश १।

५२) चण्डिकेश्वर – यी देवता यक्षेश्वरदेखि तिनकोश उत्तर तर्फमा छन् यी देवतादेखि १५ हात दक्षिणमा पिण्डारक तीर्थ छ यी देवता चण्डिकाले ध्यान गर्दा उत्पन्न भएका अन्धकासुरदैत्यले युद्धमा देवताहरूलाई जित्दा महापेव खुस भै अन्धकासुर मुक्त भया हो छ विरूपाक्षले दर्शन पाएको मिति चैत्रकृष्ण १३ का दिनमा यो जगा मृगेन्द्र पर्वत कहलाउँछ भाषामा टेखा भन्दछन् नेपालदेखि कोश ३।

५३) धर्मेश्वर – यी देवता चण्डिकेश्वरदेखि दुई पाउ पूर्व तर्फमा छन् यी देवतादेखि ४ हात दक्षिणमा ज्येष्ठीलाको र धर्म गङ्गाको सङ्गममा धर्मतीर्थ छ यी देवता धर्मराजले स्थापना गर्दा उत्पन्न भएका वक्रनाउ भएको किराती जेष्टकृष्ण १४ का दिनमा यी देवताको दर्शन गरी मर्नाले मुक्त भएको छ विरूपाक्षले दर्शन गरेको मिति चैत्रकृष्ण १४ का दिनमा यी देवतादेखि पाँच पाउ इशानमा विष्णु पादुका तीर्थ छ यिनै देवतादेखि दुइपाउ पूर्वमा नीलकण्ठ छन् यो जगा मृगेन्द्र पर्वतको काखमा कहलाउँछ भाषामा टेखालिवि कोट् भन्दछन् नेपालदेखि कोश ३।

५४) गोकर्णेश्वर – यी देवता धर्मेश्वरदेखि २०० हात पूर्वमा चन्द्र भागा नदी र वाग्वतीको सङ्गममा पितामह तीर्थ छ यी

देवता ब्रह्माले मृगको रूप लिएको शिवका शृङ्गको स्थापना गरेका कुण्डलिनीनगरमा वसन्या वैश्यको छोरा दन्तुर नाम भएको वैश्यपुलह ऋषिका उपदेशले यी देवताको ( दर्शन गरी यसै तीर्थमा पिण्डदान गर्नाले पितृहरूलाई तारी पितृका वरदानले हजार वर्ष राज्य गरि अर्का जन्ममा स्वारोचिष मनु भै भाद्र शुक्ल १४ मा यिनै देवताको दर्शन गरी मुक्त भएको छ विरूपाक्षले दर्शन गरेको मिति चैत्र कृष्ण अमावास्याको दिनमा यो जगा मुञ्जवत पर्वत कहलाउँछ भाषामा गोकर्ण भन्दछन् नेपालदेखि कोश २ गोकर्णेश्वरदेखि ३ कोश दक्षिण तर्फमा हनुमा तीर्थ छ मणिमति हनुमतिका सङ्गममा हो।

५५) कोटीश्वर – यी देवता हनुतीर्थदेखि २००० धनु वायव्य तर्फमा छन् यी देवतादेखि ५० धनु नैर्ऋत्य तर्फमा मणिमती रुद्रधारा वाग्वतीको सङ्गममा शंख मूल तीर्थ छ यी देवता उज्जयनी सहरमा वसन्या कोही ब्राह्मण पितृ हत्या गरी गङ्गामा मर्नाले ब्राह्मणको जन्म भै अनेक पातक गर्नाले ब्रह्मपिशाच नाम भएको नारदका उपदेशले यस नदीमा वर्ष दिन सम्म स्नान गरी यी देवताको दर्शन गर्नाले मुक्त भएका छन् विरूपाक्षले दर्शन गरेको मिति वैशाख शुक्ल ५ का दिनमा यो जगा मन्दर पर्वत कहलाउँछ भाषामा कुटी वहाल भन्दछन् नेपालदेखि कोश ११।

५६) वाणेश्वर – यी देवतादेखि १०० हात दक्षिणमा वाणगङ्गा तीर्थ छ यी देवता वाण ऋषिले स्थापना गरेका पिङ्गकेश नाम भएको म्लेच्छ अधिकै मैथुन गर्नाले राजयक्ष्म रोग भएको मकर सङ्क्रान्तिमा यी देवताको दर्शन गरी शिवको नाम उच्चारण गरी मर्नाले मुक्त भएको छ विरूपाक्षले दर्शन गरेको मिति वैशाख शुक्ल ५ का दिनमा यो जगा पारियात्र पर्वत कहलाउँछ भाषामा वानेश्वर टार भन्दछन् नेपालदेखि कोश १ ।

५७) ज्ञानेश्वर – यी देवता वाणेश्वरदेखि १०० धनु उत्तर तर्फमा छन् र देवतादेखि दश धनु पूर्व तर्फमा मयुर तीर्थ छ ज्ञानकुप ज्ञानधारा तीर्थ छ यी देवताहरूले आराधना गर्दा उत्पन्न भएका विटङ्क नाम भएका ब्राह्मणको लाटो छोरो ज्येष्ठ शुक्ल ९ मा यस तीर्थमा स्नान गरी यी देवताको दर्शन गर्नाले मुक्त भएको छ विरूपाक्षले दर्शन गरेको मिति वैशाख शुक्ल ६ षष्टि का दिनमा यो जगा उमाशैल पर्वत कहलाउँछ भाषामा यो जगाा ज्ञानेश्वर भन्दछन् नेपालदेखि कोश ३ ।

५८) पर्वतेश्वर – यी देवता ज्ञानेश्वरदेखि ३००० धनु उत्तर तर्फमा छन् यी देवतादेखि १० धनु उत्तरमा ज्ञानकुप तीर्थ छ हिमालय पर्वतले तपस्या गर्दा उत्पन्न भएका स्थूल पादनाम भएका यक्ष माघ कृष्ण १४ मा यी देवताको दर्शन गरी मुक्त भएको छ विरूपाक्षले दर्शन गरेको मिति वैशाख शुक्ल ११ का दिनमा यो जगा कैलाश भन्दछन् भाषामा पनि यही हो नेपालदेखि कोश १ ।

५९) जलेश्वर – यी देवता पर्वतेश्वरदेखि ४०० धनु पूर्व तर्फ छन् जलेश्वर तीर्थ छ यसै तीर्थमा देवता छन् यी देवता वाग्वतीले आराधना गर्दा उत्पन्न भएका त्रिशंक नाम भएको दैत्य कार्तिक शुक्ल ८ मा यी देवताको दर्शन गर्नाले मुक्त भएको छ विरूपाक्षले दर्शन गरेको मिति वैशाख शुक्ल १३ का दिनमा यो जगा उमाशैल पर्वत कहलाउँछ भाषामा गुह्येश्वरी घाट भन्दछन् नेपालदेखि कोश १।

६०) गुह्येश्वर सिद्धेश्वर – यी देवता जलेश्वरदेखि १० धनु दक्षिण तर्फ गुह्येश्वरीदेखि १० हात वायव्यमा छन् यी देवतादेखि १० धनु उत्तर वाग्वतीमा गुह्येश्वरी तीर्थ छ यी देवता सबै देवताले आराधना गर्दा उत्पन्न भएका पिङ्गला नाम भएकी स्त्रीले आश्विन कृष्ण ८ का दिनमा यिनै देवताको दर्शन गर्नाले मुक्त भएकी छ मिथिलामा व्यङ्ग नाम भएको चाण्डाल पनि मुक्त भएको छ विरूपाक्षले दर्शन गरेको मिति वैशाख शुक्ल १४ का दिनमा यो जगा सिद्धाचल पर्वत कहलाउँछ भाषामा मृगस्थली गुह्येश्वरी भन्दछन् नेपालदेखि कोश १।

६१) किरातेश्वर – यी देवतादेखि गुह्येश्वरीदेखि पश्चिम २५ धनुमा छन् १ यी देवता गुह्येश्वरीदेखि १० धनु पश्चिम गौरी घाट्मा रुद्र सहस्र तीर्थ छ यी देवता किरात स्वरूप भएका शिवजीले आराधना गर्दा उत्पन्न भएका शुक वक्र नाम भएका किराति कार्तिक कृष्ण चतुर्दशीमा यी देवताको दर्शन गर्नाले मुक्त भएका छन् अर्जुनले वरदान पाएका छन् विरूपाक्षले दर्शन गरेको मिति वैशाख कृष्ण ८ का दिनमा यो जगा श्लेष्मान्तक मृगस्थली कहलाउँछ भाषामा मृगस्थली भन्दछन् नेपालदेखि कोश १।

६२) भस्मेश्वर – यी देवता किरातेश्वरदेखि १०० धनु दक्षिण तर्फमा छन् यी देवतादेखि ५ धनु पूर्व तर्फमा भस्मगङ्गा तीर्थ छ महादेवले भस्मले स्नान गर्दा उत्पन्न भएका केरल देशमा बस्न्या ह्रस्व नाम भएको वनिया गङ्गा तीरमा मर्नाले ब्राह्मणका योनी भै चौर वृत्ति भएको कोही योगिको कुदुरो चोरीकन हेर्दा विभूतिको डल्लो रहेछ रिसले त्यो फोरि महादेवका उपर मिल्काई त्यही विभूति लगाई यिनै देवताका नजिकमा मर्नाले मुक्त भएको छ विरूपाक्षले दर्शन गरेको मिति वैशाख कृष्ण ८ का दिनमा दिनमा यो जगा भस्माचल पर्वत कहलाउँछ भाषामा देवपाटन भन्दछन् नेपालदेखि कोश १।

६३) भुवनेश्वर – यी देवता भस्मेश्वरदेखि २० धनु पश्चिम तर्फमा छन् यी देवता देखिन् १० हात पश्चिममा ज्ञान कुण्ड छ यी देवता पशुपतिको आराधना गर्ना आयामा भुवन नाम गरेका देवताले स्थापना गर्दा उत्पन्न भएका हस्तिनापुरमा वस्न्या मधुश्रवा नाम भएकी वेश्या माघकृष्ण ८ का दिनमा यी देवताको दर्शन गरी मर्नाले मुक्त भएकी छ विरूपाक्षले दर्शन गरेको मिति वैशाख कृष्ण ११ का दिनमा यो जगा वृषभाचल पर्वत कहलाउँछ भाषामा देवपाटन भन्दछन् नेपालदेखि कोश १।

६४) रुद्रागारेश्वर – यी देवता भुवनेश्वरदेखि ५० धनु ईशान तर्फमा छन् यी देवतादेखि ४०० हात आग्नेयमा रुद्र स्नानोदक तीर्थ छ यी देवता रुद्रले गुप्त गरी मुतुन् भनि स्थापना गरेको लिङ्ग हो अन्ध भएको अंकुश नाम भएको म्लेच्छले आषाढ शुक्ल १५ मा यिनै देवताको पूजाहारी सित यसै तीर्थको जलमागी नेत्रमा लाइ नेत्र उघारदा यी देवताको दर्शन गरी मुक्त भएको छ विरूपाक्षले दर्शन गरेको मिति वैशाख कृष्ण १३ का दिनमा यो जगा धर्माचल पर्वत कहलाउँछ भाखामा देव पाटन भन्दछन् नेपालदेखि कोश १।

आर्या तीर्थको स्नान गरी पशुपति गुह्येश्वरीको दर्शन गरी साखुगै नेमुनिको र वज्रयोगिनीको दर्शन गरी दानादि गरी समाप्त हुन्छ॥

## ९. वासुकिमाहात्म्यमा प्रख्यात लिङ्ग र तीर्थ

(यस शीर्षक अन्तर्गत ब्रह्मेश्वर, नीलकण्ठेश्वर आदि शिवलिंगहरूका साथै ब्रह्मोदक तीर्थ, सुन्दरी तीर्थ आदिको अवस्थितिको विषयमा चर्चा गरिएको छ।)

ब्रह्मेश्वर। नीलकण्ठेश्वर। स्थलेश्वर। योगकुण्ड। विल्वेश्वर। भद्रापदेश्वर। स्थूलेश्वर। कुरुक्षेत्र उग्रेश्वर रुद्रकोटिश्वर। श्रीपर्वतेश्वर। नखल। शक्रेश्वर। अविमुक्तेश्वर। हरिश्चन्द्रेश्वर। कनखल। अर्केश्वर। महाकालेश्वर। आम्रातकेश्वर। कुण्ड। चन्द्रेश्वर। गोकर्णेश्वर। जलेश्वर। विमलोदककुण्ड। अग्नीश्वर। सुवर्णेश्वर। अमलेश्वर। महेन्द्रास्य। कालेश्वर। चण्डीश्वर। आषाढेश्वर। भीमकुण्ड। नैर्ऋत्येश्वर। भद्रकर्णेश्वर। भालेश्वर। प्रयाग। वरुणेश्वर। स्थाण्वीश्वर। दण्डीश्वर। गङ्गासागर। वाटवीश्वर। छगलेश्वर। मुण्डीश्वर। प्रभास। कुबेरेश्वर। दुरदेश्वर। भूतीश्वर। नैमिषारण्य। स्कन्देश्वर। माकोटेश्वर। भवान्तकेश्वर। व्रघ्न। गणेश्वर। आद्येश्वर। नकुलीश्वर। हरिद्वार। विश्वेश्वर। मण्डलेश्वर। ज्योतिर्लिङ्गेश्वर। विष्णुकुण्ड। केदारेश्वर। कालञ्जरेश्वर व्यासेश्वर। स्कन्दतीर्थ। सिद्धेश्वर। कुकर्णेश्वर। यवग्रहेश्वर। अगस्त्य। सप्तऋषीश्वर। सप्तऋषि। सनक। अगस्त्य।

पशुकुण्ड तीर्थ। कार्तिक शुक्ल ५ गोरखनाथबाट गुह्येश्वरी जाँदा बरालका मुखको ठूलोगुफा। ब्रह्मोदकतीर्थ मार्गकृष्ण १४ गुह्येश्वरीदेखिपूर्वपट्टिका गरामा छ। सुन्दरी तीर्थ मार्गकृष्ण १४ गुह्येश्वरी जाँदा माफ वाटमा छ। स्कन्दतीर्थ विश्वरूपदेखि नैऋत्यमा तीन सय हातमा छ। स्तनकुण्डतीर्थ वैशाख कृष्ण ८ धुर्वस्थीमा विश्वरूपदेखि आग्नेयमा छ। शूलगङ्गातीर्थ। पौष शुक्ल ८ गौचरका पूर्वपट्टिका पाखामा छ। भृगुपतनतीर्थ बालेश्वरदेखि २५ हातमाथि कैलाशमा छ। अगस्त्यतीर्थ भाद्रकृष्ण ७ सङ्क्रान्ति, गौचरका पश्चिमपट्टिमा छ। सप्तऋषितीर्थ गुह्येश्वरदेखि आग्नेयमा छ। पशुगणतीर्थ फागुन कृष्ण १४ गुह्येश्वरी घाटका फद्के हाल्ने ठाउँनेरछ। गोरक्षतीर्थ कार्तिक शुक्ल १४ गोरख नाथदेखि पूर्वपट्टि वनभित्र छ। गोखुरतीर्थ। कार्तिक कृष्ण १४ भृगुपतनदेखि १० हातमनिबाट छ। योगतीर्थ। चैत्र कृष्ण १३ गोरखनाथदेखि पूर्वमा छ। सुवर्णतीर्थ आषाढ शुक्ल १५ तिलगङ्गाका शिरमा छ। काशोदकतीर्थ श्रावण शुक्ल १५ तिलगङ्गादेखि २५ हात आग्नेयमा छ। गौरीतीर्थ आश्विन कृष्ण ९ गौरीघाटमा छ। सूर्यकुण्डतीर्थ ज्येष्ठ कृष्ण ६ वनकालीदेखि उत्तर ५० हातमा छ। ब्रह्मदीपतीर्थ माघ शुक्लप्रतिपदा ७ राजराजेश्वरी पूर्व वाग्वतीपारी डिलमा छ। रुद्रसहस्रतीर्थ श्रीराम गौरीघाटदेखि १५ हातमा छ॥ ॐ स्वस्ति

## १०. श्रीगोरक्षवरस्तुतिः

(श्री ५ पृथ्वीनारायण शाहका पुरोहित चक्रपाणिद्वारा रचित यस गोरक्षवरस्तुतिमा शिवस्वरूप भगवान् गोरखनाथको भावपूर्ण स्तुति गरिएको छ। यस स्तोत्रका अनुवादक योगी नरहरिनाथज्यूले हिन्दी भाषामा अनुवाद गरी नेपाल र भारतका गुरु गोरखनाथका भक्तहरूलाई लाभान्वित तुल्याउनुभएको छ।)

निजं दैवद्वारं विविदिषुमना धीरधिषणो दरीदेवागारोपवनतटिनीभूशिखरिषु।
निरालम्बं भ्राम्यन्निजजनिधरित्रीपरिवृढं सदा ध्यायं ध्यायं मुदितमनसाऽसौ ददृशिवान्॥१॥

भगवान् गोरक्षनाथ के अनन्य भक्त गोरक्षसाम्राज्य के सर्वाभौम और गोरक्षाचलतिलक महाराजा पृथ्वीनारायण के कुलपुरोहित पण्डित चक्रपाणि एक बार घर से विरक्त होकर मानों अपने भाग्यद्वार का अनुसन्धान करने निकले। प्रमुदित

चित्तसे भगवान् गोरक्षनाथ के चरण कमलों का ध्यान करते हुए गिरिदरियों में देवालयों में वन तथा उपवनों में पुण्यसलिला नदी तथा तीर्थों में भूमण्डल में एवं गिरिशिखरों में कतिपय समय निरालम्ब भ्रमण करने के अनन्तर एक दिन अकस्मात् अपनी जन्मभूमि गोरक्षराज्य में पहुंचे। वहाँ पर उनको अधिदेव अयोनिशङ्कर गुरुगोरक्षनाथ ने अपने दिव्य दर्शन से कृतार्थ किया।

गुरुः श्रीगोरक्षोऽनवधिकरुणासागरसुधाच्छटावर्षैस्तातं विजनभुवि सिञ्चन् समगमत्।
प्रदर्श्य स्वं रूपं किमपि मनुमादिश्य रसनातले सच्चित्तत्त्वं किमपि परिलिख्यैनमवदीत् ॥२॥

असीम करुणासागर चराचरगुरु भगवान् गोरक्षनाथ सुधावृष्टिमय दृष्टि से अपने अनन्यशरण अतिप्रियभक्त चक्रपाणि को सींचते हुए विजन वन में प्रकट हुए और अपने यथार्थ ज्योतिर्मय दिव्य स्वरूप का दर्शन देकर समस्त वाङ्मय के मूलमन्त्र का उपदेश किया एवं चक्रपाणि के जिह्वाञ्चल पर कोई अलौकिक सच्चितत्व बीज को लिख कर कहने लगे।

गिरां देवी बालाननकमलसद्मा भवतु ते धराधीशश्रेणीचरणतलपीठे लुठतु ते।
भव त्वं पूर्णायुर्जगति महिमा ते प्रसरतात् सुतांल्लब्ध्वा धीरान् कुरु सुत धराचंक्रममिति ॥३॥

हे वत्स ! वाग्देवी सरस्वती सदैव तुम्हारे मुखकमल में निवास करे, नरेशमण्डली तुम्हारे चरणों में मस्तक झुकावे तुम्हारी दीर्घायु हो, सङ्गम में तुम्हारी महिमा का विस्तार हो विद्वान् पुत्रों को उत्पन्न कर भूमण्डल का भ्रमण करना। हे पुत्र ! अभी तुम गृहस्थधर्मका विधिवत्पालन करो। इतना कह कर मौन हो गये।

ततः पूर्णानन्दामृतसरसि मग्नेन मनसा पिता मूर्ध्ना बद्धाञ्जलिपुटयुजा पादकमलम्।
गुरोर्वारं वारं निजनियतिरूपस्य सपदि प्रणम्योद्दामार्थप्रचुरवचसाऽवन्दत पुनः ॥४॥

इसके अनन्तर दैवज्ञकसरी के पिता चक्रपाणि पूर्ण परब्रह्मानन्द सुधासरोवर में निमग्नचित्त से बद्धाञ्जलि होकर अपने माग्यरूप गुरु गोरक्षनाथ के चरणकमलों में बारम्बार दण्डवत् प्रणाम कर तत्काल श्रीनाथ की अनुकम्पा से प्राप्त वाग्वैभव द्वारा उद्दाम तथा प्रचुर अर्थवाली विशद वाणी से स्तुति करने लगे।

भजे श्रीगोरक्षं भुवि सकलसिद्ध्येकभवनं विरञ्चिश्रीवत्सिस्मरहरमहोविग्रहधरम्।
धरापुत्रं लोकोद्धरणधिषणाध्यासिततनुं महासामर्थ्याब्धिं भवजलधिपारीभवधियम् ॥५॥

हे गुरुदेव ! आपको अनन्तकोटि नमस्कार है, आप संसार में सकल सिद्धियों के एकमात्र कुलभवन ब्रह्माविष्णुरुद्र तीनों का तेजोमय बालगोरक्ष विग्रह धारण करने वाले निरन्तर भूमि की कुक्षि के तुल्य गुहागार में निवास करने के कारण धर पुत्र हैं। हे करुणामय ! लोकोद्धार के निमित्त नट की नाई नाना शरीर धारण करने वाले अतुल शक्तिशाली और भक्तों को भवसागर से पार करने में नित्य प्रस्तुत हैं हम आप के शरण हैं।

विराजत्सिद्धौघप्रणतचरणं चण्डभुजगोपरिष्टादासीनं भसितनिचयोद्भासितरुचिम्।
स्फुरज्ज्योत्स्नाचञ्चत्स्फटिकगिरिशोभाकररुचिं विराजन्तं पीनायतविपुलभव्याकृतिरुचा ॥६॥

हे नाथ ! आप षण्णवति मेघमालामय प्रचण्ड भुजङ्गों के उपर सिद्धासन बाँध कर बैठे हैं। योगशक्ति से देदीप्यमान सिद्धों के संघ आपके चरणकमलों में प्रणाम करते हैं। आपके चन्द्रकलातुल्य गात्रों में अखण्ड विभूति शोभमान है। दुग्धधवल भस्मोद्धूलन से आपकी वैसी ही शोभा हो रही है जैसी शारदी पूर्णिमा की रात्रि में विशद ज्योत्स्ना से स्फटिकाचल कैलास की शोभा होती है। प्रौढ और विस्तीर्ण विपुल एवं भव्य तेजोमण्डल से आपका मुखमण्डल विराजमान है। आपके इस स्वरूपका हम सदैव ध्यान करते हैं।

ज्वलद्भालभ्राजन्नयनमथ काषायवसनं फणिव्यूहाभोगाभरणगुणभूषायिततनुम्।
जटाजालैर्निष्पादितमुकुटजूटाग्ररुचिरं चिदानन्दाद्वैतामृतजलधिमग्नं परगुरुम् ॥७॥

हे त्रिलोचन ! आपके भालपट्ट में तृतीय नेत्र अग्नि जाज्वल्यमान है। सुधोज्ज्वल अबालपराक्रम बाल कलेवर पर कैलाशकूट पर सन्ध्यातप के तुल्य काषाय वस्त्र शोभायमान है। अङ्ग प्रत्यङ्ग में नाना वर्ण के नाग और उनके फणामणि दिव्य भूषणों का काम कर रहे हैं। बालभास्कर के अरूण किरणों के समान स्वर्णवर्ण जटाओं के जाल से निष्पन्न आपका रुचिर मुकुट विराजमान है। सच्चिदानन्दमय अद्वैतामृतसागर में सदैव निमग्न रहनेवाले आप समस्त गुरुजनों के परम गुरु हैं। हम आप का जप करते हैं।

महारण्यभ्राजद्वटविटपिमूलावनितलप्रदीप्यद्रत्नौघस्फुरितमणिमञ्चासनगतम्।
महाश्वेतच्छत्राधरतलगमद्वैतहृदयं समाधायासीनं परमहिमनि ब्राह्मणि विभुम् ॥८॥

हे नाथ ! आप विशाल वनस्थली के मध्य में प्रतिष्ठित सान्द्र वटवृक्ष के मूल की परिष्कृत वेदिका पर दिव्य रत्नों से खचित स्फटिकमणि के भव्य सिंहासन पर विराजमान हैं आपके ऊपर विशाल श्वेतच्छत्र सुशोभित है और आप परम महिमाशाली अद्वैतानन्दमय स्वस्वरूप ब्रह्म समाधि में मग्न हैं। आपका हम ध्यान करते हैं।

षडैश्वर्यभ्राजन्महिमजगदुद्धारमुदहन् महापद्माद्यास्ते भव निधिगणास्ते करतले।
अधीनाः सिद्ध्यौघाः महिमलविमेशित्वसहिता वशित्वप्राकाम्याणिमगरिमसम्प्राप्तिरुचिराः ॥९॥

हे भव ! हे गोरक्ष ! समग्र ऐश्वर्य धर्म यश श्री ज्ञान और वैराग्य इन षड्विध ऐश्वर्यों से अपकी महिमा अपार है। आप समस्त संसार का उद्धार करने के लिये नानावतार धारण करते हैं। विष्णु आदि रूप से मुर मधुकैटभादि दैत्यों का संहार कर जगत् की बाधाओं को शान्त करते है। महापद्म-पद्म-शङ्ख-मकर-कच्छप-मुकुन्द-कुन्द-नील और खर्व ये नव निधियाँ आव के करतल में रहती है। एवं अणिमा-महिमा-लघिमा-गरिमा-प्राप्ति-प्राकाम्य-ईशित्व और वशित्व ये अष्ट सिद्धियाँ आपके अधीन हैं और आज्ञाकारी हैं।

धरित्रीसञ्चार ! त्रिदिवचर ! नागालयचरन् ! नभश्चारिन् ! वातज्वलनजलचारस्तव वशः।
त्रिकालप्रेक्षावत्त्रिगुणमय ! वेदागमगुरो ! यदिच्छेस्तत्कर्तुं प्रभवसि हि सर्वज्ञमुकुट ! ॥१०॥

हे गुरो ! हे गोरक्ष ! हे कामगते ! आपकी गति अकुण्ठित है। सप्त पाताल सप्तद्वीपवती पृथ्वी, स्वर्गादि सत्यपर्यन्त ऊर्ध्वलोक अन्तरिक्षवायु अग्नि और जल में आप स्वच्छन्द भ्रमण करते हैं। हे त्रिगुणमय आप तीनों गुणों का आश्रय लेकर सृष्टिस्थितिसंहार करते हैं। हे त्रिकालज्ञ भूतभविष्यवर्तमान की बातें आपको समस्त निगमागमों के आदि गुरु आदिनाथ आप ही हैं। हे सर्वज्ञमुकुट आप के अमोघ ज्ञान के प्रकाश में समस्त ब्रह्माण्ड करामलकतुख्य हो जाता है और आप जो चाहते हैं सो करते हैं कर्तुं अकर्तुं अन्यथाकर्तुं समर्थ हैं।

कृतार्थोऽस्मि स्वामिंस्तव करुणया प्राप्तमहिमा यथा मां मद्वंशं कुरु निजदयाम्भोधिभवनम्।
इदं त्वेकं याचे चरमपवनोत्क्रान्तिसमये ममात्मा कैवल्यं लभतु परमब्रह्ममहसि ॥११॥

हे स्वामिन् ! हे नाथ ! आप की करुणा से मुझे अतुल महिमा मिली, आप के पुण्य दर्शन से मैं कृतार्थ हुआ। हे देव ! जैसी मुझ पर कृपा की ऐसी ही मेरे वंश पर सदा अनुकन्पा बनाये रखें अन्त में आप से यही एक वर माँगता हूँ कि जब मेरा अन्तिम श्वास निकले तब मेरी आत्मा परब्रह्मस्वरूप आपकी ज्योति में कैवल्यभाव प्राप्त करे लीन हो जाये।

त्वदीयं सामर्थ्यं गदितुमथ वाचाम्पतिमतिर्नवा भूयाद् भूयात् प्रभुरिति वितर्कीयति मनः।
तथापि त्वद्दत्तप्रचुरकवितागर्वरभसान्मदुक्तं क्षन्तव्यं ननु निजशिशूक्तिर्गुरुमुदे ॥१२॥

हे नाथ ! हे सदाशिव ! आप के सामर्थ्य का वर्णन करने में बृहस्पति की बुद्धि भी समर्थ है या नहीं ? इस बात का सन्देह है। तथापि आप की दी हुई प्रचुर कविता के गर्व के आवेश में मैंने जो कुछ धृष्टता की इस पर क्षमा करें। क्योंकि बालकों की तोतली बोली माता पिता गुरुजनों को आनन्द देती है।

निशम्य निजवन्दनां प्रमुदिते तवोक्तं भवेदिति प्रचलिते गुरौ सबहुमानमस्मत्पिता।
प्रमोदभरनिर्भरद्रढिममानसाम्भोरुहे निधाय गुरुपादयोर्युगमभूत्स सर्वोत्तमः ॥१३॥

चक्रपाणि के सुपुत्र दैवज्ञकेसरी कहते हैं – इस प्रकार अपनी दिव्य स्तुति सुनकर अति प्रसन्न मन से तथास्तु तुम्हारी इच्छा पूर्ण हो ऐसा वर देकर भगवान् गोरक्षनाथ के अन्तर्धान हो जाने पर आनन्द से गद्गद् और प्रफुल्ल हृदयकमल में भक्तिपूर्वक चराचर गुरु गोरक्षनाथ के चरण कमलों को स्थापित कर हमारे पिता घर लौट आये। गोरक्षवर से संसार में सबसे उत्तम हुए।

इति

श्रीगोरक्षचरणकमलधूलिधूसरितमौलिगोरक्षवरप्रसादलब्धसमृद्धगोरक्षसाम्राज्यसार्वभौमस्वस्तिश्रीगिरिराजचक्रचूडामणिनरनारायणेत्यादिविविधविरुदावलिविराजमानमानोन्नतनतशरणसकलसामन्तमुकुटमणिमरीचिचोचुम्ब्यमानचरणउुगलश्री५मन्महाराजाधिराजपृथ्वीनारायणसाहदेवपुरोहितनिखिलनिगमागममथनमन्दरायमाणगोरक्षवरप्रदानलब्धसरस्वतीनिवासमसृणरसनाञ्चलचक्रपाणिप्रणीता श्रीगोरक्षवरस्तुतिः सम्पूर्णा॥

श्रीनाथाय नमः !

# ११. वाग्वतीतीर्थयात्रा र विधान

(यस शीर्षकमा सर्वप्रथम भगवान् गणेशको स्मरण गरी वाग्वती नदीका तटमा रहेका तीर्थहरूको दर्शनस्पर्शन गर्न जाने यात्रीहरूका निमित्त तीर्थयात्रा गर्ने दिन र तीर्थयात्रीले गर्नुपर्ने सामान्य नियमबारे चर्चा गरिएको छ।)

१२.१ तीर्थयात्राको आरम्भ

श्रीगणेशाय नमः ॥ श्रीसरस्वत्यै नमः ॥ श्रीसर्वशक्तिस्वरूपिणे सत्यनारायणाय नमः ॥

सिन्दूरले शोभित दुई गण्ड विघ्नादिको तोडिदिने घमण्ड ॥
वरदान् दिँदामा नहुने प्रचण्ड प्रसन्न हुन् श्री गुरु वक्रतुण्ड ॥१॥
यात्रा गरूँ वाग्वतीको भनेर प्रस्थान जो गर्छ व्रती बनेर ॥
उस्लाई सो काम महासुविस्ता दिनेछ खासा यही एक बाटो ॥२॥

आफ्ना पुत्र कुमारलाई शिवले नेपालका तीर्थको।
जो माहात्म्य बताइयो उही कुरा सम्झी भएसम्मको
स्वामी कार्तिकेयले पनि सुर ऋषि नारद् र श्रीकृष्णको
संवाद ल्याई महर्षि नेमुनिजीका साम्ने बताईयको ॥३॥

यात्रा वाग्वतीको ठूलो फल दिने बिस्तारपूर्वक् यहाँ
लेखी दिन्छु म तीर्थवासीहरूले राखुन् सदा मन्महाँ ॥
नाउँ ठाउँ विधान दान र अनी स्नानादिको फल्समेत्
यसैबाट बुझिलिनू सकलले पर्दैन क्यै मेहनत् ॥४॥

वैशाख् कृष्ण चतुर्दशी तिथिमहाँ सर्जाम साथ्मा धरी।
यो यात्रा गरना निमित्त हिँडनू घर्देखि साईत् गरी ॥
फर्पिङ्मा पुगी यात्रिहरू जति छन् सम्पूर्ण जम्मा हुनू ॥
एक् रात् त्यहीँ बसेर वस्तुहरू सब् ठीक्ठाक पारी लिनू ॥५॥

औँसीका दिनमा बिहान सबले श्रीशीखनारानमा।
मुण्डन्हेरु गरेर स्नान गरनू त्यहीँ सफा कुण्डमा।
प्रायश्चित्तनिमित्त शक्तिअनुसार् गोदान गर्नू अनि ॥
दर्शन् गर्नु गएर शुद्ध मनले नारायणैको पनि ॥६॥

फेरि गैकन वज्रजोगिनिजिको दर्शन् र पूजा गरी।
जानू दक्षिणकालिमा सकलले भक्ती मनैमा धरी ॥
पूजाहेरु गरेर माग्नू वरदान् यात्रामहाँ विघ्न क्यै।
हे माई ! नपरोस् भनेर सबले पर्नेर खुप् नम्र भै ॥७॥

गोपालेश्वर कुण्डमा अनि पछी जानू र नूहाउनू।
गोपालेश्वरको पूजाहरू गरी रुद्रीसमेत् लाउनू ॥
येति काम् सकेर जानू सबले डेरा विषे त्यस् दिन।
एक् छाक् मात्र हविष्य खाई बसनू एकाग्र पारेर मन् ॥८॥

(पं. दामोदर प्याकुरालद्वारा रचित यस तीर्थविधानमा नेपालका सम्पूर्ण महत्त्वपूर्ण तीर्थहरूको यात्रा गर्ने मार्गदर्शनका साथ ती ती तीर्थमा गई गर्नुपर्ने कर्तव्यको विधान गरिएको। यसमा पनि पुरानै शैलीको नेपाली भाषाको प्रयोग भएको छ। यहाँ अपरिमार्जित रूपमै समाविष्ट छ।)

अब तीर्थहरूको नाउँ र त्यसको महात्म्य लेखिन्छ ।। श्रीः।। वैशाख कृष्ण प्रतिपदाका दिन प्रातःकालमा उठेर यात्रीले शिखरनारायणमा नित्यकर्म सकी कटुवालदहको सेतुबन्धतीर्थमा जानू। त्यो तीर्थ सीमगाउँनिर मच्छिन्द्रनाथको उत्पत्ति हुने वनको डाँडोदेखि उत्तरपट्टिको वनमुनि एक ठूलो पत्थरका तलतिर छ। त्यहाँ पुगेपछि सबैले वाग्वतीमा स्नान गर्नू अनि पुरोहितलाई मधुपर्क गराइ धोती, उपर्ना, औंठी, पञ्चपात्र, छाता, जुत्ता, लट्ठी, पञ्चरत्नादिले वरण गर्नू। सुवर्ण र प्रायश्चित्त गोदान गरेर उनै पुरोहितलाई दिनू। यति भएपछि वाग्वतीका किनारमा ध्वजा-पताकाले सुशोभित गरी मण्डप बनाएर त्यसभित्र एक पूर्णताम्रकलश स्थापना गर्नू। त्यसमा वरुणादि देवता र तीर्थ गङ्गाजीको आह्वान पूजनादि गर्नू।

त्यति सकिएपछि सोही कलश ध्वजा र चामरसहित गङ्गाका प्रवाहमा लगी राख्नू। त्यसैका समीपमा बसेर स्नान, सङ्कल्प र तीर्थप्रार्थनादि गरी पुरोहितका आज्ञाले स्नान गर्नू। सो स्नान गर्दा नयाँ धोती समाप्तिका दिन वाग्द्वारमा पुरोहितलाई दिनुपर्छ। स्नान गरेपछि सो ध्वजासहित पूर्णघटलाईपुरोहितले उठाएर कर्ताका सपरिवार भई शङ्खघण्ट छत्र, चामरादिका साथ जयजयकार गर्दै अर्को तीर्थतिर प्रस्थान गर्नू। यस तीर्थमा स्नान गर्नाले र यस तीर्थमा रहेका सेतुबन्धेश्वर महादेवको दर्शनएवं पूजा गर्नाले सम्पूर्ण यज्ञको फलप्राप्ति र रुद्रलोकमा वास हुन्छ। यस तीर्थमा मात्र विशेष स्नान गर्नाको इच्छा हुनेले चैत्रमहिनाको शुक्लाष्टमीमा स्नान गर्नुपर्दछ। त्यस स्नानले रुद्रलोकमा वास हुन्छ। कोटि गोदानको फलप्राप्ति र स्त्रीदेखि वियोग भएको कष्ट निवारण हुन्छ। जातिभ्रष्ट भए पनि शुद्ध भई शिवजीका साथमा बस्न पाइने हुन्छ।

१. सेतुबन्धतीर्थबाट वासुकितीर्थमा जानू। त्यो तीर्थ सेतुबन्धतीर्थदेखि अलिकति पूर्वतिर ठूलो पत्थरमुनि छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ दूध, लावा, नागको फण, यज्ञोपवीत र कांस्यपात्र दान गर्नू। त्यहाँ रुद्रेश्वर महादेव छन्। तिनको पूजा, दर्शन र स्नान गर्नाले नागको भय हुँदैन। सम्पूर्ण रोग नाश हुन्छ। विष्णुलोकको वास पनि हुन्छ। यहाँ विशेष स्नान गर्नेलेश्रावणमहिनाको नागपञ्चमीमा स्नान गर्नू फल उही हो।

२. वासुकितीर्थबाट दुर्गातीर्थमा जानू। त्यो तीर्थ वासुकितीर्थदेखि पूर्वतिर सीमगाउँदेखि उत्तरतिर छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ गोदान गर्नुपर्दछ। त्यहाँ दुर्गेश्वर महादेव छन्। त्यहाँ पूजा, स्नान गर्नाले दुर्गालोक पाइन्छ। यो तीर्थ उपतीर्थ हो।

३. दुर्गातीर्थबाट व्याघ्रतीर्थमा जानू। त्यो तीर्थ दुर्गातीर्थदेखि पश्चिम सीमगाउँदेखि उत्तरतिर छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ व्याघ्रेश्वर महादेव छन्। तिनको पूर्वदर्शन गर्नाले कोटि गोदान गरेको फल पाइन्छ। त्यहाँ विशेष स्नान गर्नेले भाद्र पूर्णिमा वा सङ्क्रान्तिका दिन स्नान गर्नुपर्छ। सो स्नानका फलले सो प्राणी विष्णुभक्त हुन्छ। त्यसका पुण्यका प्रसादले त्यसलाई फेरि जन्मनु र मर्नुपर्दैन। सय गोदानको पुण्य पाई सुखपूर्वक वैकुण्ठ प्राप्त हुन्छ।

४. व्याघ्रतीर्थबाट हनुमत्तीर्थमा जानू। त्यो तीर्थ व्याघ्रतीर्थदेखि पूर्व व्याघ्रतीर्थदेखि उत्तरको बगरमा छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ लड्डु, मुङ्ग दाल, खराउ, लठी, रुमाल दान गर्नू। त्यहाँ हनुमदीश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यहाँ स्नान र पूजा गर्नाले पुत्रपौत्रादि पाइन्छ। त्यहाँ विशेष स्नान गर्नेले चैत्रमहिनाको शुक्लपक्षको दशमीमा अथवा भाद्रमहिनाको तृतीया तिथिमा गर्नू। त्यसले पुत्रपौत्रादि र सहस्रगोदान गरेको फल पाई मरेउप्रान्त पराक्रमी भई हनुमान्को भक्त हुन्छ।

५. हनुमत्तीर्थबाट सर्वमयतीर्थमा जानू। त्यो तीर्थ त्यहींनिरको भीरमुनि छ। वरिपरिका पहाडको बीचमा पूर्वबाट आउँदछ। खोलामा ठूलो भकारीजस्तो कालोसेतो ढुङ्गानिर राता मच्छिन्द्र उत्पत्ति हुने पहाडको अगलबगलमा छ। त्यसमा पहिलेको भैं स्नान गर्नू। त्यहाँ सर्वमय देवेश्वर महादेव छन्। तिनको पूजा र दर्शन गर्नू। यो तीर्थ उपतीर्थ हो।

६. सर्वमयतीर्थबाट भद्रावतीतीर्थमा जानू। त्यो तीर्थ सर्वमयतीर्थदेखि दक्षिण फर्पिङदेखि दक्षिणतिरको डाँडोदेखि पश्चिम पीठगणका नदीको सङ्गममा छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ भद्रावतीश्वर महादेव छन्। तिनको पूजा गर्नू। यो तीर्थ उपतीर्थ हो।

७. भद्रावतीतीर्थबाट सीतातीर्थमा जानू। त्यो तीर्थ दनुवार गाउँदेखि पश्चिम घटबु भन्ने गाउँदेखि पूर्वतिर टिकुरेडाँडादेखि उत्तरतिर छ। उसका माथिबाट सानु बगर पनि छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ सीतेश्वर महादेव छन्। तिनको पूजा गर्नू। विशेष गरी स्नान गर्नेले चैत्रमहिनाको दुबै पक्षको नवमीमा वा दशमीमा गर्नू। त्यसले सबै पाप नाश हुन्छ, पुत्रपौत्रादि पनि हुन्छ। सौभाग्य प्राप्त भई सय गोदानको फल पाई दुर्गालोक पाइन्छ।

८. सीतातीर्थबाट लक्ष्मणतीर्थमा जानू। त्यो तीर्थ सीतातीर्थदेखि पश्चिम मच्छिन्द्रको धनसारदेखि उत्तर फर्पिङको डाँडोदेखि दाहिनेपट्टि कुमारी बसेको डाँडोदेखि पूर्वतिर छ। त्यहींदेखि दक्षिणमा बगर छ। त्यहाँ उत्तरबाट खोला आउँदछ। त्यस तीर्थमा पूर्ववत् स्नान गर्नू। त्यहाँ लक्ष्मणेश्वर महादेव छन्। तिनको पूजा गर्नू त्यसमा स्नान गर्नाले सबै तीर्थमा स्नान गरेको फल पाएर सबै रोग नाश हुन्छ। कोटि गोदानको फल पाई वैकुण्ठवास हुन्छ। यहाँ विशेष चैत्रमहिनाको दुबै पक्षको नवमीमा स्नान गर्नू।

९. लक्ष्मणतीर्थबाट रामचन्द्रतीर्थमा जानू। त्यो तीर्थ फर्पिङको डाँडोदेखि पश्चिम टुकु भन्ने डाँडोदेखि उत्तरतिर पर्दछ। त्यहाँ श्मशान छ। उत्तरबाट आएको खोला पनि छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ रामचन्द्रेश्वर महादेव छन्। तिनको पूजा, दर्शन गर्नू। त्यहाँ स्नान गर्नाले अश्वमेधको फल पाइन्छ। विशेष गरी स्नान गर्नू। त्यसले कोटि गोदानको फल पाइन्छ। पहिले गरिएका पापदेखि पनि मुक्त हुन्छ। वन्यजन्तुदेखि पनि भय हुँदैन। अन्तमा विष्णुभक्त हुन पाइन्छ।

१०. रामचन्द्रतीर्थबाट गोपालेश्वरतीर्थमा जानू। त्यो तीर्थ फर्पिङका डाँडोदेखि पश्चिम टुकु भन्ने डाँडोदेखि उत्तरतिर पर्दछ। त्यहाँ श्मशानघाट छ। उत्तरबाट आएको खोला पनि छ। त्यहाँ गोपालेश्वर महादेव रहेका छन्। तिनको पूजा गर्नू। त्यहाँ पूजा स्नान गर्नाले चैत्रमहिनाको दुबै पक्षको द्वादशीमा गर्नू। त्यसले कोटि गोदान गरेको फल पाइन्छ। पहिलेदेखि गरेका पापबाट उत्पन्न भएको वन्यजन्तुको भयदेखि मुक्त भई अश्वमेध र हजार गोदान गरेको फल पाई रुद्रलोकमा बस्न पाइन्छ।

११. गोपालेश्वरतीर्थबाट दामोदरतीर्थमा जानू। त्यो तीर्थ गोपालेश्वरदेखि पश्चिम दुई खहरेको बीचमा गोपालेश्वरको वनदेखि पूर्वतिर छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ दामोदरेश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यहाँ विशेष स्नान गर्नेले चैत्रमहिनाको शुक्लपक्षको एकादशी तिथिमा गर्नू। त्यसले पशुयोनिमा कमाएको पापदेखि मुक्त हुन्छ। गोमेध यज्ञ गरेको फल पाइन्छ, गोलोकको वास हुन्छ।

१२. दामोदरतीर्थबाट चन्द्रोदयतीर्थमा जानू। त्यो तीर्थ दामोदरदेखि उत्तरपश्चिमका कुनामा पर्दछ। त्यहाँ दुईवटा डाँडाका बीचबाट आएका छन् दुई नदी, त्यहीँनिर अलिकति पर बगर पनि छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। जहाँ चन्द्रोदयेश्वर महादेव छन्, तिनैलाई मणिकर्णिकेश्वर पनि भन्दछन्। त्यहाँ विशेष स्नान गर्नेले वैशाखपूर्णिमा तिथिमा र रविसप्तमी परेका दिन अथवा पञ्चमीका दिन स्नान गर्नू। त्यसले सबै पापदेखि मुक्त भई मुक्ति पाउँछ अथवा मार्गशीर्ष पूर्णिमाका दिन नुहाउनाले महारोग र महापातकदेखि मुक्त भई अनेक जन्मका पापबाट पनि मुक्त हुन्छ। वाजपेय र अश्वमेधयज्ञ गरे बराबरको फल पनि प्राप्त हुन्छ।

१३. चन्द्रोदयतीर्थबाट सर्वोदयतीर्थमा जानू। सो फर्पिङ डोलडाँडादेखि पश्चिम पाहाचोक भन्ने गाउँदेखि पछाडि वाहाचोक भन्ने गाउँदेखि पूर्व सो खेलपातिलदेखि दक्षिणतिर छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ विशेष स्नान गर्नेले मंसिरमहिनाको रविसप्तमी तिथिमा गर्नू। त्यसबाट महारोगदेखि मुक्त भई वाजपेय र अश्वमेधयज्ञको फल पाइन्छ। त्यहाँ सूर्योदयेश्वर महादेव छन्। तिनको पूजा र दर्शन गर्नाले कोटि गोदानको फल पाइन्छ।

१४. चन्द्रोदयतीर्थबाट सुलोचनतीर्थमा जानूँ। त्यो तीर्थ चन्द्रोदयतीर्थदेखि उत्तरतिर पर्दछ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ सुलोचनेश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यहाँ स्नान र पूजा गर्नाले कोटि गोदानको फल पाइन्छ। त्यहाँ विशेष स्नान गर्नेले माघको दुबै पक्षको पञ्चमीमा गर्नू। त्यसले सबै शत्रुको नाश भई अश्वमेधयज्ञ गरे बराबरको फल पाई सुरलोकमा वास हुन्छ।

१५. सुलोचनतीर्थबाट मच्छिन्द्र महात्रिजयतीर्थ जानू। त्यो तीर्थ वाग्वतीको पुलदेखि दक्षिण हात्तीवनको उकालोदेखि पूर्व बुङ्मतीको उकालोनिर छ। त्यहाँ सर्वेश्वरमहादेव छन्। तिनको पूजा गर्नू। त्यहाँ स्नान र पूजा गर्नाले महापातक नाश हुन्छ। विशेष स्नान गर्नेले चैत्रमहिनाको दुबै पक्षको परेवाका दिन गर्नू। त्यसले मनोवाञ्छासिद्धि भई अश्वमेधयज्ञ गरेको फल र सय कोटि गोदान गरेको फल पाई तारालोकमा वास हुन्छ।

१६. मच्छिन्द्र महात्रिजयतीर्थबाट सर्वौषधीतीर्थमा जानू। त्यो तीर्थ रानीबारी र गोरस भन्ने गाउँदेखि उत्तर डोलखेतनिर रहेको टैदहदेखि दक्षिणतिर वायव्य कुनाबाट आएको वोसन खोलाको छेउमा छ। त्यसमा अन्य ठाउँमा झैं स्नान गर्नू। त्यसमा पुष्टकारी तथा अन्नादि दान गर्नू। त्यहाँ सर्वौषधेश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यहाँ स्नान र पूजा गर्नाले दश अश्वमेधयज्ञ गरे बराबरको फल पाइन्छ। त्यसमा विशेष स्नान गर्नेले मंसिरमहिनाको दुबै पक्षको सप्तमीमा गर्नाले सय गोदानको फल पाई विष्णुलोकमा वास गर्छ।

१७. सर्वौषधीतीर्थबाट वराहतीर्थमा जानू। त्यो तीर्थ दुहुवेनीदेखि पूर्व चोभार गुठदेखि दक्षिण खईंबुटारदेखि पश्चिमतिर छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ वाराहेश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यहाँ स्नान र पूजा गर्नाले सम्पूर्ण पापदेखि छुट्दछ। त्यहाँ विशेष स्नान मार्गशीर्ष महिनाको दुबै पक्षका षष्ठी तिथिमा गर्नेले सयकडौं पापबाट छुट्दछ। त्यसपछि सय गोदानको पुण्य पाई बस्न पाउँदछ।

१८. वराहतीर्थबाट कक्कोगणपतितीर्थमा जानू। त्यो तीर्थ सहबुको डाँडोदेखि पश्चिम चोभारघाटदेखि मुनि तल्लो भकारीनिर पर्दछ। त्यहाँ कक्कोगणपतीश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यहाँ विशेष गरी वैशाखमहिनाको शुक्लपक्षको चौथीका दिन स्नान गर्नाले कोठिऔं विघ्नको नाश भई गाणपत्ययज्ञको फल र अग्निष्थेमयज्ञको फल पाई अनेक प्रकारको सिद्धि हुन्छ।

१९. कक्कोगणपतितीर्थबाट चक्रतीर्थमा जानू। त्यो तीर्थ चोभारको पुलमुनि पश्चिमतिरको पहाडमुनि हुँदै आएको नदीनिर छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ चक्रतीर्थेश्वर महादेव छन्। तिनको पूजा गर्नू। विशेष गरी त्यस तीर्थमा चैत्रमहिनाको दुबै पक्षको द्वादशीका दिन स्नान गर्नाले चक्रवर्ती भई बस्न पाउँछ।

२०. चक्रवर्तीबाट यहाँ गणपतितीर्थमा जानू। त्यो तीर्थ ऐजनदेखि उत्तरतिर भित्र खोँचमा छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ महागणपतीश्वर महादेव छन्। तिनको पूजा गर्नू। लड्डु दान पनि गर्नू। त्यो गर्नाले नागदेखि भय हुँदैन। विशेष गरी त्यस तीर्थमा वैशाखपञ्चमीका दिन स्नान गर्नाले विमानद्वारा वैकुण्ठको गति हुन्छ, पाउ-पाउमा अश्वमेधयज्ञ गरे बराबरको फल प्राप्त हुन्छ।

२१. महागणपतितीर्थबाट कर्कोटकतीर्थमा जानू। त्यो तीर्थ महागणपतितीर्थदेखि पूर्वतिर छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ कर्कोटकेश्वर महादेव छन्। तिनको पूजा गर्नू। सो गर्नाले गणपतिको भक्त भइन्छ। विशेष गरी त्यस तीर्थमा वै शाखपञ्चमीका दिन स्नान गर्नाले मरेउप्रान्त विष्णुको लोक पाइन्छ।

२२. कर्कोटकतीर्थबाट भृगुपतन वा भृगुपाततीर्थमा जानू। त्यो तीर्थ चोभारको पुलदेखि उत्तर दुईवटा डाँडाको खोँचभित्र छ। त्यहाँ भृगुपातेश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ लड्डु दान गरी स्नान र पूजा गर्नाले अश्वमेधयज्ञ गरे बराबरको फल पाइन्छ। विशेष गरी त्यस तीर्थमा सबै पर्वमा स्नान गर्नू। त्यसमा पनि विशेष गरी वैशाखमहिनाको दुबै पक्षको चौथीका दिन स्नान गर्नू। त्यसले दश अश्वमेधयज्ञ गरे बराबरको फल पाइने र सो तीर्थमा देह छोडी मरे उप्रान्त पछि हुने सबै जन्मलाई छाडी ब्रह्मपद पाउँछ। पापदेखि छुटेको छँदो सिद्धिको भोग गरी अग्निष्टोमको फल पाई कोटि गोदानको पुण्यभोगी पनि हुन्छ। फेरि त्यहाँ चोभार गणेशजी विराजमान हुनुभएको छ। राम्रा हिसाबसँग श्रद्धापूर्वक नम्र भई बडो भक्तिपूर्वक पूजा गरी अनेक प्रकारका मिष्टान्नादि नैवेद्य चढाई ब्राह्मणका मुखारविन्दबाट गिरेका अमृतवाणीको माहात्म्य सुनी ब्राह्मणलाई सन्तोष गरेदेखि देवताका प्रसादले कुनै जन्ममा पनि पुत्रजन्य बाधा हुँदैन भनी केही ग्रन्थमा लेखिएको छ। जय-जय शब्द गर्दै वास पनि त्यहाँ बस्नुपर्छ। यसको माहात्म्य बताएरै सकिँदैन।

२३. भृगुपतनतीर्थबाट प्रमोदातीर्थमा जानू। त्यो तीर्थ चोभारको पुलदेखि इशानतर्फको डाँडाभन्दा पूर्व ठैवको डाँडदेखि उत्तर नख्खुखोलाको दोभानमा ठूलो ढुङ्गामुनि छ। त्यहाँ प्रभावती नदी पनि छन्। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ प्रमोदेश्वर महादेव छन्। त्यहाँ स्नान र पूजा गर्नाले अनशन व्रत गरेको फल पाइन्छ। विशेष गरी त्यस तीर्थमा चैत्रमहिनाको दुबै पक्षको द्वादशीका दिन स्नान गर्नाले अनशन व्रत गरी हरिवासरमा स्नान गर्नाले जो फल पाइन्थ्यो सोभन्दा दुईगुणा अधिक फल पाई अन्त्यमा विष्णुलोकमा बस्न पाइन्छ। जुन-जुन इच्छा छ,सो-सो इच्छित लिने होस् वा प्रमाण नहोस् तापनि पाउँछ। सम्पूर्ण दान गर्नाले भएका पुण्यभन्दा अधिक स्नान गर्नाले पाइन्छ। अश्वमेधयज्ञ गरे बराबरको फल पाई रुद्रलोकमा वास हुन्छ अथवा पूर्वजन्मको पापले गरी घटिया रूप र कान्तिले हीन भई जन्मेको छ तापनि यहाँ स्नान गर्नाले स्त्री छ भने अनेक लक्षणयुक्त सुन्दर कान्ति भएकी हुन्छे। साथै पुरुष भएदेखि भने निर्मल शरीर भएको हुन्छ।

२४. प्रमोदातीर्थबाट सप्तनदीतीर्थमा जानू। त्यो तीर्थ चोभारको पुलदेखि आग्नेय बागडोलदेखि उत्तरतिर छ, त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ सप्तनदीश्वर महादेव छन्। तिनको पूजा गर्नू। यो तीर्थ उपतीर्थ हो।

२५. सप्तनदीतीर्थबाट कायानिर्मलतीर्थमा जानू। त्यो तीर्थ भाजङ्गलदेखि पूर्व, कीर्तिपुरदेखि पनि पूर्व पाँगा गाउँदेखि ईशान दोबाटो गाउँदेखि दक्षिणढुङ्गाको साँघुनिर पाटीमुनि पुलदेखि नैर्ऋत्यतिर छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ कायानिर्मलेश्वर महादेव छन्। त्यहाँ पूजा स्नान गर्नाले दश गोदानको फल पाइन्छ। विशेष गरी त्यस तीर्थमा स्नान गर्नेले माघमहिनाको शुक्लपक्षको तृतीयामा गर्नू। त्यसले रुद्रलोक पाइने र शरीरमा रहेको पाप छुटी यस लोकमा अनेक सुख भोगी अन्त्यमा स्वर्गमा वास हुन्छ। त्यहाँ सौभाग्यदान गर्नुपर्छ।

२६. कायानिर्मलतीर्थबाट शक्रतीर्थमा जानू। त्यो तीर्थलाई इन्द्रतीर्थ पनि भन्दछन्। त्यो तीर्थ बल्खु दोभानदेखि पूर्व पुल्चोकदेखि नैर्ऋत्य टेकुदोभानदेखि दक्षिण बारुदखानादेखि पश्चिम वैद्योतीको पाटीनिर छ। त्यहाँ अघिका झैँ स्नान गर्नू। त्यहाँ गोदान गर्नुपर्छ। त्यसमा स्नान र दान गर्नाले षडैश्वर्य प्राप्त हुन्छ। विशेष गरी त्यस तीर्थमा भाद्रमहिनाको शुक्लपक्षको षष्ठीका दिन स्नान गर्नाले पापरहित भएर इच्छामाफिक फल पाई शक्रलोकमा वास हुन्छ।

२७. शक्रतीर्थबाट पञ्चनदतीर्थमा जानू। त्यो तीर्थ टेकु दोभान र कुलेश्वरीदेखि पूर्व कृष्णको मन्दिरदेखि दक्षिणतिर छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ पञ्चमूर्ति महादेव छन्। कुन-कुन भने कुलेश्वर, सफलेश्वर, प्रद्युम्नेश्वर, पञ्चलिङ्गेश्वर र पञ्चनदेश्वर आदि। यी पाँच महादेवको पूजा राम्ररी गर्नुपर्छ। त्यहाँ पाँच नदी मिलेको पनि छ। जहाँ लहरै बसेर नुहाउनुपर्छ। त्यहाँ अनेक प्रकारका नैवेद्य चढाउनु र सुवर्णादि द्रव्य र गोदान पनि गर्नुपर्छ। सो गर्नाले विष्णुलोक पाइन्छ।

विशेष गरी चैत्रमहिनाको दुबै पक्षको अष्टमीका दिन र आश्विनमहिनाको शुक्लपक्षको पञ्चमीका दिन स्नान गर्नू। त्यसले पाँच जन्मसम्मको पाप नाश हुन्छ। विधिपूर्वक अरू पर्वमा स्नान गर्नाले दश अश्वमेध फल प्राप्त भई स्वर्गमा वास हुन्छ।

२८. पञ्चनदतीर्थबाट पचलीभैरवतीर्थमा जानू। त्यो तीर्थ त्रिपुरेश्वरदेखि पूर्व महादेवदेखि दक्षिणतिर छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ पचलीभैरव छन्। तिनको पूजा गर्नू। त्यहाँ स्नान र पूजा गर्नाले अनन्तपुण्य पाइन्छ। यो पनि उपतीर्थ हो।

२९. पचलीभैरवतीर्थबाट कालमोचनतीर्थमा जानू। त्यो तीर्थ त्रिपुरेश्वरदेखि दक्षिण पचलीदेखि पूर्व महादेवको मन्दिरदेखि दक्षिणतिर छ। त्यस तीर्थमा अधिका फैँ स्नान गर्नू। त्यहाँ कालमोचनको मन्दिरभित्र गई दर्शन गर्नू। त्यहाँ धेरै देवता छन्। तिनीहरूको पनि दर्शन गर्नू। त्यहाँ नुन र सुवर्णादि पनि दान गर्नू। सो गर्नाले र फेरि अक्षयतृतीयाका दिन गरिने यावत् दान जो छ सो पनि त्यहीँ गर्नुपर्छ। त्यो गर्नाले कालपाशदेखि मुक्त हुन्छ। विशेष गरी त्यसमा स्नान गर्नेले बडाबडा ठूला पर्वमा गर्नुपर्छ। योगादिमा पनि गर्नुपर्छ र भातृद्वितीयाका दिन स्नान गर्नाले त झन् अनन्त फल पाइन्छ र रुद्रलोकमा वास हुन्छ। त्यहाँ लक्ष्मीनारायणको दर्शनादि गर्नुपर्छ। त्यति गरिसकेपछि पुराणादि सुनी त्यस दिन त्यहीँ वास बस्नुपर्छ।

३०. कालमोचनतीर्थबाट सहोदरतीर्थमा जानू। त्यो तीर्थ कालमोचनदेखि पूर्व वाग्वतीको र रुद्रवतीको सङ्गमनिर वाणेश्वरथरदेखि पश्चिम दिशापट्टि छ, वाणेश्वरथरदेखि नैर्ऋत्य दिशामा पर्छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ स्नान र पूजा गर्नाले नारदको दर्शन पाई भक्ति बढ्दछ। विशेष गरी त्यस तीर्थमा स्नान गर्नेले पौषको शुक्लचतुर्दशीमा गर्नू। त्यसको महात्म्य यस्तो छ कि – पहिले कोही म्लेक्ष जातिका दुई दाजुभाइ रहेछन्। तिनीहरू बहुतै धनाढ्य पनि रहेछन्। एक दिन एक भाइले अर्को भाइलाई मार्न उद्योग गरेर म धनी हुँला भन्ने इच्छाले दुष्ट बुद्धि लिएर धनका लोभले मारिदियो। पछि त्यस पापको कारणले सबै प्रजाले त्यसलाई त्याग गरे। फेरि त्यसलाई कुष्ठरोग भई धेरै कालसम्म दुःख पायो। त्यो धेरै दिन पृथ्वीमा पनि घुम्यो। त्यो केही दिनमा एक सज्जनका साथ हिँडेका बखतमा त्यस सज्जनका सङ्गतले सहोदरतीर्थमा भक्तिपूर्वक स्नान गरेका प्रभावले नारदको दर्शन पाई तिनैका मुखारविन्ददेखि हे म्लेक्ष तँ ! पौषमहिनाको शुक्लपक्षको चतुर्दशीका दिन स्नान गर। यसै गरी एक वर्षसम्म स्नान गरिस् भने तेरा शरीरमा रहेको कुष्ठादि रोग र सबै पाप नाश भई विमानमा चढी स्वर्गमा जान पाउनेछस् भन्ने यस्तो उपदेश पाई बडा भक्तिपूर्वक स्नान गऱ्यो। त्यसपछि त अन्त्यमा त्यो दैत्य वैकुण्ठमा गयो।

३१. सहोदरतीर्थबाट ज्ञानतीर्थमा जानू। त्यो तीर्थ थापाथलीदेखि पूर्व पाटनदेखि उत्तर बानेश्वर थुम्कोदेखि नैर्ऋत्य दिशापट्टि छ। त्यहाँ नुहाएर राम्ररी भक्तिपूर्वक पूजनादि कर्म गर्नुपर्छ। त्यो पनि उपतीर्थ हो।

३२. ज्ञानतीर्थबाट वाणगङ्गातीर्थमा जानू। त्यो तीर्थ ज्ञानतीर्थको समीपमा छ। त्यहाँ वाणगङ्गेश्वर महादेव छन्। तिनको पूजा र दर्शन गर्नू। त्यो उपतीर्थ हो।

३३. वाणगङ्गातीर्थबाट मृत्युञ्जय महातीर्थमा जानू। त्यो तीर्थ मरीचि ऋषिले तपस्या गरिएको ठाउँ हो। यो मलीजोगदेखि पूर्व गणेशजीका नजिक ज्ञानेश्वरदेखि दक्षिण शङ्खमूलको वायव्य कुनामा सानो खोलानिर पाटीमुनि मायको थुप्रोनिर छ। त्यहाँ पूर्वतत् स्नान गर्नू। त्यहाँ मृत्युञ्जयेश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यहाँ कोही रुद्री वा मृत्युञ्जय स्तोत्रादि दान गर्दा रहेछन्। सो श्रद्धाले गरिने मात्र रहेछ। त्यहाँ स्नान र पूजा गर्नाले अल्पमृत्यु निवारण हुन्छ। विशेष पौषमहिनामा स्नान गर्नाले सप्तजन्मसम्मका पाप नाश हुन्छन् अथवा पौषमहिनाको दुबै पक्षको नवमीमा स्नान गर्नू, त्यसले रुद्रलोकमा वास हुन्छ। सोही तीर्थमा एक वर्षपर्यन्त स्नान गर्नाले अश्वमेधयज्ञ गरे बराबरको फल पाइन्छ।

३४. मृत्युञ्जयतीर्थबाट उमापतितीर्थमा जानू। त्यसलाई उमामहेश्वरतीर्थ पनि भन्दछन्। यो मृत्युञ्जयतीर्थदेखि पूर्वपट्टि शङ्खमूलदेखि केही पश्चिमतिरको सोझो दुरपाटीको बीचमा पाटनबाट आउने पत्थर छापेको छ, सडकनिर छ। त्यसमा ताम्रपत्र सुवर्णादि गोदान गर्नू। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यसले कोटि जन्मका पापबाट मुक्त हुन्छ। विशेष गरी त्यहाँ ज्येष्ठमहिनाको शुक्लपक्षको परेवामा वा सोमबारे औँसीमा अथवा खालि औँसीमा स्नान गर्नाले रुद्रलोक पाइन्छ। नारीजातिहरूको सौभाग्य पनि बढ्ने हुन्छ। स्त्री पतिको अत्यन्त प्यारी हुन्छे। स्त्री र पुरुषको प्रेम बढ्दछ। कोटि गोदानको फल पाई रुद्रलोकको वास पनि हुन्छ।

३५. उमामहेश्वरतीर्थबाट शङ्खमूलतीर्थमा जानू। त्यो तीर्थ उमामहेश्वर तीर्थनिर शङ्खमूलमा रहेको तीनवटा ताडको वृक्षदेखि पूर्वतिर छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ गोदानमात्र गर्दा रहेछन्। त्यहाँ शङ्खमूलेश्वर महादेव छन्। तिनको पूजा गर्नू। विशेष गरी यसमा सम्पूर्ण पर्वमा भक्तिपूर्वक स्नान गर्नू। यो तीर्थ सम्पूर्ण अरू तीर्थभन्दा ठूलो छ। यहाँ स्नान गर्नाले मन, शरीर र वचनदेखि पाप उत्पन्न भएको नाश हुन्छ। सो स्नान गर्ने मानिस परमगतिमा प्राप्त हुन्छ। त्यहाँको महिमा वर्णन गर्न सकिँदैन।

३६. शङ्खमूलतीर्थबाट रुद्रधारातीर्थमा जानू। त्यो तीर्थ शङ्खमूलनिर वाग्वतीमा बुलबुल गरी सहस्र भुल्का गरेर पानी आउँछ। कृष्णका मन्दिरको ढोकाका सामुन्ने पर्दछ। त्यहाँ ताम्रपात्र, तिल, सुवर्ण, शङ्ख, गोदान र सेतो वस्त्र पनि दान गर्नुपर्छ। त्यहाँ रुद्रेश्वर महादेव छन्। त्यसमा अन्य ठाउँमा भैँ स्नान गर्नू। त्यहाँ स्नान र पूजा गर्नाले सहस्र जन्मका पापबाट मुक्ति हुन्छ। त्यहाँ विशेष स्नान गर्नाले सहस्र जन्मको महापातकदेखि मुक्ति हुन्छ। कोटि जन्मको पाप पनि नाश हुन्छ। त्यहाँ एक वर्षसम्म स्नान गर्नाले सय वाजपेय अश्वमेधादिको पुण्य पाई रुद्रलोकमा वास हुन्छ।

३७. रुद्रधारातीर्थबाट उत्तरप्रयाग भन्ने तीर्थमा जानू। त्यो तीर्थ कोटेश्वरदेखि पश्चिम, पाटनदेखि ईशान वा उत्तरपट्टि पर्छ। शङ्खमूलतीर्थको र मनोहरा बुङ्गमतीको सङ्गममा पर्छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ उत्तरप्रयागेश्वर महादेव छन्। तिनको पूजा र दर्शन गर्नू। यो तीर्थ पनि उपतीर्थ हो।

३८. उत्तरप्रयागतीर्थबाट अमरावतीतीर्थमा जानू। त्यो तीर्थ कोटेश्वरदेखि पश्चिम पाटनदेखि ईशान सानो देवताको मन्दिरमुनि छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यस तीर्थमा अमरावतीश्वर महादेव छन्। तिनको पूजा र दर्शन गर्नू। त्यसले अनेक यज्ञ गरेको फल पाइन्छ। विशेष गरी त्यस तीर्थमा भदौमहिनाको कृष्णपक्षको चतुर्दशीमा र एकादशीका दिन स्नान गर्नाले जन्मान्तरदेखि कमाइएको पाप नाश भई हजारौं यज्ञको फल प्राप्त हुन्छ। अन्त्यमा अमरावतीको वास हुन्छ।

३९. अमरावतीतीर्थबाट विमलावतीतीर्थमा जानू। त्यो तीर्थ भुवनेश्वरी र कोटेश्वर महादेवदेखि पश्चिम पाटनदेखि ईशान दिशातिर पर्दछ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ विमलेश्वर महादेव छन्। तिनको पूजा र दर्शन गर्नाले दश प्रकारको पापदेखि मुक्ति हुन्छ। विशेष गरी कार्तिकमहिनाको शुक्लपक्षको सप्तमी तिथिमा त्यहाँ स्नान गर्नाले रोगदेखि बाधा हुँदैन। आयु बढ्दछ। अग्निष्टोम यज्ञको फल पाई अग्निलोकमा वास हुन्छ।

४०. विमलावतीबाट निर्मलावतीतीर्थमा जानू। त्यो तीर्थ विमलावतीतीर्थदेखि अलिकति पर कोटेश्वरदेखि पश्चिमतिर छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ निर्मलेश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यहाँ स्नान र पूजा गर्नाले भ्रूणहत्यादि गरिएको पाप नाश हुन्छ। विशेष गरी त्यहाँ कार्तिकमहिनाको दुबै पक्षको षष्ठीका दिन स्नान गर्नाले अनेक प्रकारको पाप नाश भई दश तुलादान गरेको फल पाई रुद्रलोकमा वास हुन्छ।

४१. निर्मलावतीतीर्थबाट वायुमतीतीर्थमा जानू। सो तीर्थ कोटेश्वरदेखि पश्चिम कोटेश्वर जाने उकालोनिर टिकरिया भन्ने गाउँदेखि पूर्व कोटेश्वरदेखि वायव्य दिशामा पर्छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ वायुमतीश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यसले शरीर बलवान् हुन्छ। विशेष गरी त्यस तीर्थमा फागुन पूर्णिमाका दिन र चैत्रका दुबै पक्षको त्रयोदशीका दिन स्नान गर्नाले कफ, पित्त र वायु आदिले गरिएका व्याधिले कदापि त्यस प्राणीलाई दुःख पर्दैन। वायुतुल्य पराक्रमी भई दश कोटि होम गरेको फल र ज्ञान सय गोदानको फल पाई वायुलोकमा वास हुन्छ। अर्को जन्ममा पनि बडो पराक्रमी भई जन्मनेछ।

४२. वायुमतीतीर्थबाट योगवतीतीर्थमा जानू। सो तीर्थ वायुमतीदेखि उत्तर कोटेश्वर जाने उकालोनिर टिकुरीया गाउँदेखि पूर्वपट्टि छ। कोटेश्वरदेखि केही वायव्यदिशातिर पर्छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ योगवतीश्वर महादेव छन्। तिनको पूजा र दर्शन गर्नू। त्यहाँ स्नान र पूजा गर्नाले ठूलो सिद्धि पाइन्छ। विशेष गरी त्यस तीर्थमा ज्येष्ठमहिनाको दुबै पक्षको अष्टमीका दिन स्नान गर्नाले योगसिद्धि हुन्छ। यसै तीर्थलाई कोही योगकुण्ड महातीर्थ हो भनी भन्दछन्। विशेष गरी कार्तिक शुक्ल नवमीमा र नवमीले युक्त भएको दिन वा मूलनक्षत्रले युक्त भएको रवि शुक्रबारमा र परेवा तिथिमा स्नान गर्नाले योगसिद्धिद्वारा योगेश्वरको भजन गर्न पाई सकल सङ्कष्यदिदेखि निवृत्ति हुन्छ। सय यज्ञको फल पनि प्राप्त हुन्छ।

४३. योगवतीतीर्थबाट सिद्धवतीतीर्थमा जानू। त्यो तीर्थ त्रिलोचनेश्वरदेखि पश्चिम टिकुरिया भन्ने गाउँदेखि पूर्व कोटेश्वरदेखि उत्तर ठूलो बकैनाको रुखनिर छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ सिद्धवतीश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यसले ठूलो सिद्धि पाइन्छ। विशेष गरी त्यस तीर्थमा ज्येष्ठमहिनाको दुबै पक्षको अष्टमीका दिन स्नान गर्नाले कोटि गोदानको फल पाई सिद्धिलोकमा बस्न पाइन्छ। त्यस दिनमा शङ्खमूल आई लक्ष्मीनारायणको दर्शन र पूजा गरी वास बस्नुपर्छ।

४४. सिद्धवतीतीर्थबाट त्रिलोचनातीर्थमा जानू। त्यो तीर्थ बानेश्वरदेखि पूर्व पशुपतिदेखि दक्षिण शोणभद्र सरदारको घरदेखि वायव्य र भावतीदेखि उत्तरतिर छ। त्यहाँ कुम्भेश्वर महादेव छन्। देवलभित्र गोसाईंस्थानबाट आएको कुण्ड छ। उत्तरपट्टि बगलामुखी छन्। त्यहाँ मच्छिन्द्रनाथको जात्रा हुन्छ। त्यहाँ स्नान गर्नू। त्यहाँ त्रिलोचनेश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यहाँ स्नान र पूजा गर्नाले बन्ध्या भएकी स्त्री छ भने पुत्रवती हुन्छे। विशेष गरी ज्येष्ठमहिनाको दुबै पक्षको अष्टमीका दिन स्नान गर्नाले कोटि गोदान गरेको फल पाई विष्णुलोकको वास हुन्छ।

४५. त्रिलोचनातीर्थबाट सत्यभामातीर्थमा जानू। त्यो तीर्थ भादगाउँ जाने वाग्वतीको पुलदेखि आग्नेय भद्रको घरदेखि उत्तरतिर

छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यस तीर्थमा सत्यभामेश्वर महादेव छन्। तिनको पूजा र दर्शन गर्नू। त्यहाँ स्नान र पूजा गर्नाले वैकुण्ठ प्राप्त हुन्छ। यो उपतीर्थ हो।

४६. सत्यभामा तीर्थबाट कुम्भेश्वरतीर्थमा जानू। यो तीर्थ त्यहीँनिर छ। त्यहाँ पूर्ववत् स्नानादि गर्नू। यो पनि उपतीर्थ हो।

४७. कुम्भेश्वरतीर्थबाट प्रयागतीर्थमा गई स्नान गर्नू। त्यसलाई प्रयागराजतीर्थ भन्दछन्। त्यो तीर्थ भादगाउँ जाने पुलदेखि उत्तर पशुपतिको वनदेखि पश्चिमपट्टि छ। त्यहाँ पूर्ववत् स्नान र पूजा गर्नू। त्यहाँ प्रयागेश्वर महादेव छन्। तिनको पूजा गर्नाले दश प्रकारको पाप नाश हुन्छ। विशेष गरी मकरसङ्क्रान्तिका दिन स्नान गर्नाले कोटि गोदानको फल पाइन्छ।

४८. प्रयागराजतीर्थबाट वामनगङ्गातीर्थमा जानू। त्यो तीर्थलाई मणितीर्थ पनि भन्दछन्। सो तीर्थ पोडेट्येलदेखि पश्चिम, बानेश्वरदेखि ईशान, पशुपतिदेखि दक्षिण मनगङ्गाको समीपमा छ। त्यहीँनिर मनगङ्गा पूर्वबाट आएकी छन्। त्यहाँ खनेर जल जम्मा गरी पूर्ववत् स्नान गर्नू। त्यहाँ महादेवको पूजा गर्नू। त्यसले गोदान गरेको फल पाइन्छ। विशेष गरी चैत्रमहिनाको शुक्लपक्षको तृतीयाका दिन स्नान गर्नाले इन्द्रलोकमा बस्न पाइन्छ।

४९. वामनगङ्गातीर्थबाट पीठिकाख्यतीर्थमा जानू। त्यो तीर्थ वज्रेश्वरीदेखि ईशानपट्टि पोडेट्येलदेखि उत्तर, वाग्वतीदेखि पूर्वतिर छ। नगिचै ढिस्काको भित्तामा चुनोट लागेको छ। उसमा त्रिविक्रमावतार छन्। त्यहाँ मुनिबाट वामनकुण्ड पनि छ। त्यहाँ स्नान, दर्शन र पूजा गर्नू। त्यहाँ पीठिकाख्येश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यसले पाप नाश हुन्छ। विशेष गरी माघनवमीका दिन र फागुनकृष्ण त्रयोदशीमा स्नान गर्नाले सम्पूर्ण पाप नाश भई दुर्गालोकमा वास हुन्छ। त्यहाँ नाचगान गर्नू भनी केही ग्रन्थमा भनिएको छ।

५०. पीठिकाख्यतीर्थबाट त्रिविक्रमतीर्थमा जानू। त्यो पीठिकाख्यतीर्थनिर छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ त्रिविक्रमेश्वर महादेव छन्। तिनको पूजा र दर्शन गर्नू। त्यसले हजार वर्षको पाप नाश हुन्छ। विशेष गरी चैत्रवैशाख महिनाको द्वादशीका दिन स्नान गर्नाले कोटि गोदानको फल पाइन्छ।

५१. त्रिविक्रमतीर्थबाट सुवर्णतीर्थमा जानू। त्यो तीर्थ वज्रेश्वरीदेखि ईशान जोगी गाड्ने ठाउँदेखि दक्षिण वरदेखि पश्चिम तिलगङ्गाको समीपमा छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ सुवर्णेश्वर महादेव छन्। तिनको पूजा र दर्शन गर्नू। त्यहाँ तिल, सुवर्ण र गोदान ब्राह्मणलाई पूजा गरी धोती, उपर्ना दान गर्नू। त्यसले दश तुलादान गरेको फल पाइन्छ। विशेष गरी आश्विनमहिनाको दुवै पक्षको द्वादशी, अष्टमी अथवा औंसीमा स्नान गर्नाले ब्रह्महत्यादि पाप नाश भई कोटि गोदानको फल पाई वैकुण्ठको वास हुन्छ।

५२. सुवर्णेश्वर तीर्थबाट ब्रह्मतीर्थमा जानू। त्यो तीर्थ चारवटा सिवालदेखि पूर्व तिलगङ्गादेखि उत्तरतिर छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ ब्रह्मतीर्थेश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यहाँ जपमाला, पुस्तक, गौमुखी आसनी इत्यादि दान गर्नू। त्यहाँ स्नान र पूजा गर्नाले यज्ञ गरेको फल पाइन्छ। विशेष गरी माघमहिनाको दुवै पक्षको द्वितीयाका दिन दुई वर्षसम्म नित्यस्नान गर्नाले सबै पापबाट छुटेर ब्रह्मलोकमा वास हुन्छ।

५३. ब्रह्मश्मशानतीर्थबाट मोक्षक्षत्रीयतीर्थमा जानू। त्यो तीर्थलाई राजश्मशानवतीतीर्थ भन्दछन्। सो तीर्थ ऐजनदेखि उत्तर वनदेखि पूर्व पाडेट्येलदेखि उत्तर चौरबगरनिर छ। त्यहाँ चुनोट पिटेको छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ हतियार दान गर्नू। त्यहाँ गोदान पनि गर्नुपर्छ। त्यहाँ राजश्मशानेश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यहाँ स्नान गर्नेले राजसूय यज्ञ गरेको फल पाइन्छ। विशेष गरी चैत्रमहिनाको षष्ठीका दिन स्नान गर्नाले इन्द्रलोक पाइने हुन्छ।

५४. राजश्मशानतीर्थबाट राजराजेश्वरीतीर्थमा जानू। त्यो तीर्थको पूर्ववत्देखि पश्चिमपट्टि इशान ढोकाको सामुन्ने छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ राजेश्वर महादेव छन्। तिनको पूजा गर्नू। सो गर्नाले फेरि जन्मनुपर्दैन। विशेष गरी आश्विनमहिनाको दुवै पक्षको अष्टमी, नवमी र रोहिणीनक्षत्रले युक्त भएको रविबारमा स्नान गर्नाले स्त्रीजातिहरूको सौभाग्य बढ्छ। सातै जन्मका पापबाट मुक्त भई मुक्ति पाइन्छ। यस लोकमा सुखी भई देवीको लोकमा बस्न पाइन्छ। त्यहाँको महिमा ठूलो छ, वर्णन गरी सकिँदैन।

५५. राजेश्वरीतीर्थबाट उमापतितीर्थमा जानू। त्यस तीर्थलाई उमामहेश्वरतीर्थ भन्दछन्। सो तीर्थको पारिपट्टिको श्मशानदेखि पश्चिम, राजेश्वरीढोकाअगाडि पत्थरको भकारीमुनि छ। नारायण त्यहाँ माथिबाट छन्। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ उमामहेश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यसले अनेक जन्मका पापबाट मुक्त हुन्छ। विशेष गरी ज्येष्ठमहिनाको शुक्लपक्षको परेवामा स्नान गर्नाले पाप नाश भई उमापतिको लोक पाइन्छ।

५६. उमामहेश्वरतीर्थबाट शापान्तमोचनतीर्थमा जानू। त्यो तीर्थ पशुपतिको पुलदेखि दक्षिण राजेश्वरीको पाटीनिर चुनोट पिटिएको भकारीमाथिका महादेवमुनिबाट छन्। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ शापान्तमोचन महादेव छन्। तिनको पूजा गर्नू। त्यसले कोही पिशाच मुक्त भएको थियो। विशेष गरेर कार्तिक पूर्णिमासीका दिन स्नान गर्नाले पिशाचयोनिमा जन्म हुँदैन।

५७. शापान्तमोचनतीर्थबाट क्षेत्रपालतीर्थमा जानू। सो तीर्थ पशुपतिको पुलदेखि दक्षिण राजेश्वरीदेखि उत्तरमा क्षेत्रपाल भएका तीर्थनिर छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ क्षेत्रपालेश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यसको सौख्य पाइन्छ। विशेष गरी आश्विनमहिनाको दुबै पक्षको अष्टमीका दिन स्नान गर्नाले क्षेत्राधिपति भई मनले चिताएको सर्वसिद्धि र कोटि गोदानको फल पाई क्षेत्रपाललोक पाइन्छ।

५८. क्षेत्रपालतीर्थबाट भस्मगङ्गा महातीर्थमा जानू। त्यो तीर्थ रामचन्द्रको मन्दिरदेखि वायव्य पुलदेखि दक्षिण श्मशानदेखि पूर्वी गुफानिर छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यसमा पञ्चहतियार दान गर्नू। त्यहाँ यमुनेश्वर महादेव छन्। त्यहाँ भश्मेश्वर महादेव पनि छन्। तिनको पूजा गर्नू। त्यहाँ स्नान गर्नाले शरीरमा रहेको पाप नाश हुन्छ। विशेष गरी पञ्च महापर्वमा स्नान गर्नू। त्यसले शरीर निर्मल हुन्छ।

५९. भस्मगङ्गामहातीर्थबाट विष्णुतीर्थमा जानू। त्यो तीर्थ रामचन्द्र मन्दिरदेखि वायव्य दिशातिर पुलदेखि दक्षिण र श्मशानदेखि पूर्वको गुफानिर छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ विष्ण्वीश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यहाँ उत्तम महिनामा स्नान गर्नाले हजार गोदानको फल पाइन्छ।

६०. विष्णुतीर्थबाट जयमङ्गलातीर्थमा जानू। त्यो तीर्थ राममन्दिरदेखि पश्चिम मङ्गला गौरीथानको मुनिबाट श्मशानदेखि उत्तर दिशामा पर्छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ मङ्गलेश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यसले पाप नाश हुन्छ। विशेष गरी ज्येष्ठमहिना र चैत्रमहिनाको कृष्णचतुर्दशीमा नुहाउनाले पाप नाश हुन्छ। ज्येष्ठमहिनाको अष्टमीका दिन स्नान गर्नाले राजाको मान्य भई सङ्ग्राममा जय हुन्छ। कार्यसिद्धि र स्वर्गप्राप्ति पनि हुन्छ।

६१. जयमङ्गलतीर्थबाट आकाशभैरवतीर्थमा जानू। त्यो तीर्थदेखि उत्तर राममन्दिरदेखि वायव्य वछ्लाको मन्दिर छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यसले दशकिसिमको पाप नाश हुन्छ। विशेष गरी त्यस तीर्थमा फागुनमहिनाको कृष्णपक्षको चतुर्दशीका दिन स्नान गर्नाले स्त्री सौभाग्यवती, रूपवती र गुणवती हुन्छे। विशेष गरी ज्येष्ठमहिनाको शुक्लपक्षको दशमीका दिन स्नान गर्नाले ब्रह्महत्या नाश भई रुद्रलोक पाइन्छ।

६२. आकाशभैरवतीर्थबाट वछ्लातीर्थमा जानू। त्यो तीर्थदेखि उत्तर राममन्दिरदेखि वायव्य दिशामा वछ्लाको मन्दिर छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ वछ्लेश्वर महादेव छन्। तिनको पूजा गर्नू। सो गर्नाले दश किसिमको पाप नाश हुन्छ। विशेष गरी त्यस तीर्थमा श्रावणमहिनाको वा फागुनमहिनाको शुक्लपक्षको वा कृष्णपक्षको द्वादशीमा स्नान गर्नाले पाप नाश हुन्छ। हस्तानक्षत्रयुक्त भएछ भने कोटि गोदानको फल पाइन्छ।

६३. वछ्लातीर्थबाट मातृगङ्गातीर्थमा जानू। त्यो तीर्थ पुलमुनि पारिपट्टिको भित्तानिर वछ्लादेखि पूर्वपट्टि खोपानिर छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ मातागङ्गेश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यहाँ सिधा, तर्पण र पिण्डदान गरी ब्राह्मणभोजन गराउनु पर्दछ। त्यसले पितृ खुसी हुन्छन्। विशेष गरी त्यस तीर्थमा चैत्रमहिनाको औंसीमा र पञ्चपर्वमा स्नान गर्नाले पुण्य पाई आरोग्यवान् भएर पुत्रपौत्रादिको सुख भोग्ने हुन्छ र वैकुण्ठ प्राप्त हुन्छ।

६४. माता गङ्गातीर्थबाट पञ्चविनायकतीर्थमा जानू। सो तीर्थ ऐजननिर आर्याघाटमा छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ वछ्लेश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यहाँ स्नान र पूजा गर्नाले दश किसिमको पाप नाश हुन्छ। विशेष गरी फागुनमहिनाको दुबै पक्षको चौथीका दिन स्नान गर्नाले बुद्धिको अतिसिद्धि भई मनोवाञ्छा सिद्ध हुन्छ। सुन्दरता प्राप्त भई कोटि गोदान गरेको फल र स्वर्गलोकमा वास हुन्छ।

६५. पञ्चविनायकतीर्थबाट कोषोदकतीर्थमा जानू। त्यो तीर्थ ऐजननिर छ आर्याघाटैनिर पर्दछ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ कोषोदकेश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यसले अश्वमेधयज्ञको फल पाइन्छ। विशेष गरी त्यस ठाउँमा ज्येष्ठमहिनाका दुबै पक्षको पञ्चमीमा र एकै नक्षत्रले युक्त भएको दिन स्नान गर्नाले दश अश्वमेधयज्ञको फल पाई रुद्रलोकको वास हुन्छ।

६६. कोषोदकतीर्थबाट सौभाग्यतीर्थमा जानू। त्यो तीर्थ वामतर्फको दुई भकारीका बीचमा आर्याजलका सङ्गममा छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ सौभाग्येश्वर महादेव छन्। तिनको पूजा र दर्शन गर्नू। त्यहाँ सौभाग्य दान गर्नू। त्यसले सौ भाग्यवती भई परमगति प्राप्त हुन्छ। विशेष गरी त्यस तीर्थमा चैत्रमहिनाका कृष्णपक्षको दशमी र सङ्क्रान्तिमा अथवा शनिप्रदोषमा स्नान गर्नाले सम्पूर्ण पाप नाश हुन्छ। पुरुष भए भाग्यमानी हुन्छ। स्त्रीपुरुषको अत्यन्त प्रीति हुन्छ।

६७. सौभाग्यतीर्थबाट कुबेरतीर्थमा जानू। त्यो तीर्थ त्यहींनिर आर्यघाटसमीपमा छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ कुबेरेश्वर महादेव छन्। तिनको पूजा र दर्शन गर्नू। त्यहाँ अन्नसहित भएको सौभाग्य दान पनि गर्नुपर्छ। सो गर्नाले तीन जन्मका पापबाट मुक्त हुन्छ। विशेष गरी त्यस तीर्थमा माघ महिनाको चतुर्दशीमा र वैशाख शुक्ल तृतीयाका दिन अथवा सोही महिनाको औंसीमा र पूर्णिमाका दिन स्नान गर्नाले पाप नाश भई कुबेरतुल्य धनी हुन्छ।

६८. कुबेरतीर्थबाट गौरातीर्थमा जानू। त्यो तीर्थ आर्यघाटको दाहिनेतर्फ अर्द्धादेवीका सामुन्ने पर्दछ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ गौरीतीर्थेश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यहाँ अन्नादि दान गर्नू। त्यहाँ पार्वती खुशी होऊन् र मेरो सौभाग्य बढोस् भन्नाका निमित्त सौभाग्यदान पनि गर्छन्। त्यहाँ स्नानदान गर्नाले स्त्री छ भने सन्तानप्राप्त भई भाग्यवती हुन्छे र पुरुष छ भने भाग्यमानी हुन्छ। सबभन्दा श्रेष्ठ भएको यस गौरीतीर्थमा विधिपूर्वक ज्येष्ठमहिनाको शुक्लपक्षको तृतीयाका दिन स्नान गर्नाले स्त्री छ भने सबैभन्दा श्रेष्ठ भई गौरीलोकमा बस्न पाउँछे। पुरुष भए सबैको श्रेष्ठ भएर गौरीलोकमा बस्न पाउँछ। रोहिणीनक्षत्र परेको तृतीयाका दिन स्नान गर्ने स्त्रीको मनोवाञ्छा सिद्ध हुन्छ। पुरुषको सकल कामना सिद्ध हुन्छ।

६९. गौरीतीर्थबाट खर्वरीकातीर्थमा जानू। त्यो तीर्थ ऐजन दाहिनेतर्फ शतवरीकाग्निदेवीका सामुन्ने तलतिर पर्दछ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ खर्वरीकेश्वर महादेव छन्। तिनको पूजा गर्नू। सो स्नान र पूजा गर्नाले अश्वमेध फल पाइन्छ। विशेष गरी त्यस तीर्थमा कार्तिकमहिनाको शुक्लपक्षको कृत्तिका नक्षत्रयुक्त तृतीयाका दिन स्नान गर्नाले र अथवा परेवाका दिन स्नान गर्नाले अघिल्ला योनिमा गरिएको पाप र यस जन्मका पापबाट समेत नाश भई सय अश्वमेधयज्ञको फल र वायपेययज्ञको फल पाई रुद्रलोकको वास हुन्छ।

७०. खर्वरीकातीर्थबाट मृगोदकतीर्थमा जानू। त्यो तीर्थ ऐजननिर आर्यघाटमा वामतर्फ हरोथिरका सामुन्ने आर्यजलका सङ्गममा छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ मृगोदकेश्वर महादेव छन्। तिनको पूजा र दर्शन गर्नू। सो गर्नाले पशुको जन्म हुँदैन। त्यहाँ फलफूल मिठाई दान गर्नू। विशेष गरी त्यस तीर्थमा वैशाखशुक्ल तृतीयाका दिन अथवा मृगशिराले युक्त भएको तृतीयाका दिन स्नान गर्नाले पशुजन्य बाधा कुनै जन्ममा पनि हुँदैन अथवा सङ्क्रान्तिका दिन वा कार्तिकमहिनाको कृष्णपक्षको नवमीका दिन स्नान गर्नाले र पूर्णिमाका दिन स्नान गर्नाले सकल सङ्कटको नाश भई अश्वमेध, वाजपेय र राजसूय यज्ञ गरेको फल पाई रुद्रलोकमा वास हुन्छ।

७१. मृगोदकतीर्थबाट आर्यातीर्थमा जानू। त्यो तीर्थ ऐजन आर्यघाटमा पशुपतिको पूर्वी ढोकादेखि पूर्व वामतर्फ आर्यनदीका सङ्गममा छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ अन्नसहित भएको तामाको घडा, नरिवल, गाई, भूमि, चिउरा, वस्त्र, दीपमालिकादि दान गर्नू। त्यहाँ आर्येश्वर महादेव छन्। तिनको पूजा र दर्शन गर्नू। त्यसले सकल पाप नाश हुन्छ। त्यहाँ रुद्रीपाठ र ब्राह्मणलाई भोजन गराई गरिबलाई अन्नदान गर्नू। सो गर्नाले सकल पाप नाश भई स्त्री छ भने पुरुषको अत्यन्त प्यारी हुन्छे। पुरुष छ भने असल शीलस्वभाव भएकी स्त्री पाउँछ। विशेष गरी त्यस तीर्थमा कल्याणदायक त्रिवेणीको सङ्गम परेको छ। त्यहाँ बुद्धिमान्हरूले श्रद्धाले युक्त भईकन कार्तिकमहिनामा र अरूअरू ठूल्ठूला पर्वमा विशेष गरी पूर्णिमाका दिन स्नान गर्नाले पुण्य हुन्छ। रूपवान् पनि हुन्छ। त्यहाँ स्नानका प्रभावले चौरासीलाख जन्मसम्म गरिएको पाप नाश हुन्छ। अशक्तजनले खाली पूर्णिमाका दिन नुहाउनाले मात्र पनि त्यो फल छ। श्रद्धापूर्वक एक वर्षपर्यन्त त्यहाँ निरन्तर स्नान गऱ्यो भने ब्रह्महत्या नाश हुन्छ। फेरि पञ्चमहापाप आदि पनि छुट्दछ। विशेष गरी स्त्रीजातिहरूले अर्काका पुरुषमा हेर्नाले भएको पाप र घटिया वस्तुमा हेर्नाले उत्पन्न भएको पाप सातै जन्मदेखि कमाएको भए पनि अरू पर्वमा र चतुर्दशीमा स्नान गरेका पुण्यले स्त्रीजातिले पुरुषलाई कपट, छल र हेला गरी दुर्वाच्य गर्नाले भएको पाप नष्ट हुन्छ। सो स्त्री सुन्दरी पनि हुन्छे। उसका पतिको पनि दीर्घायु हुन्छ। पुत्रपौत्रादि धनसम्पत्ति पनि हुन्छ। त्यस तीर्थमा नुहाउनाले विशेष अर्को फल पनि पाइन्छ। के भने मन वचन र शरीरदेखि उत्पन्न भएको सबै पाप नष्ट हुन्छ। स्त्रीहरूको ललाटमा आभूषणादिले र सिन्दूरादि सौभाग्यले कहिल्यै छोड्दैन। बारम्बार पतिकी प्यारी हुन्छे। अन्त्यमा विमानमा चढी सौभाग्यसहित आर्यलोकमा बस्न पाउँछे। यहाँ गरिएका पुण्यको फल अवर्णनीय छ।

७२. आर्यतीर्थबाट पावनिकातीर्थमा जानू। त्यो तीर्थ आर्यघाटैमा पशुपतिको पूर्वी ढोकादेखि पूर्व र ब्रह्मनालदेखि दक्षिणपट्टि छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ पावनिकेश्वर महादेव छन्। तिनको पूजा र दर्शन गर्नू। त्यसले अनन्त सुख पाइन्छ। विशेष गरी कार्तिकको दुबै पक्षको द्वादशीमा स्नान गर्नाले महापातक नाश भई विष्णुसायुज्य पाइन्छ।

७३. पावनिकातीर्थबाट नारायणीतीर्थमा जानू। त्यो तीर्थ पशुपतिको ढोकादेखि पूर्व ब्रह्मनालदेखि दक्षिण वामतर्फ माजुदेवका सम्मुख सङ्गममा छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ नारायणेश्वर महादेव छन्। तिनको पूजा गर्नू। यहाँ विशेष गरी स्नान गर्नेले कार्तिकको शुक्लपक्षको द्वादशी दशमी र नवमीमा स्नान गर्नू। त्यसले पनि नारायणको भक्त हुन पाइन्छ।

७४. नारायणीतीर्थबाट त्रिवेणीकातीर्थमा जानू। त्यो तीर्थ आर्यघाटमा नारायणी तीर्थदेखि उत्तरतिर छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ त्रिवेणीकेश्वर महादेव छन्। तिनको पूजा गर्नू। सो स्नान, पूजा गर्नाले अनेक पाप नाश हुन्छ। विशेष गरी त्यहाँ आश्विनमहिनाको पूर्णिमाका दिन स्नान गर्नाले जन्मभरि गरिएको पाप नाश भई कोटि गोदानको फल पाइन्छ। सो त्रिवेणीतीर्थ भनेको ब्रह्मनाल हो। यो तीर्थ चौरासी लक्षणले युक्त भई कल्याणदायक भइरहेको छ। गुप्त भई त्यहाँ वाग्वती बस्न गएकी छन्।

७५. त्रिवेणीतीर्थबाट ढुण्डिराजतीर्थमा जानू। त्यो तीर्थ ऐजननिर छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ ढुण्डिराजेश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यहाँ लड्डू दान गर्नू। यो उपतीर्थ हो।

७६. ढुण्डिराजतीर्थबाट विघ्नराजतीर्थमा जानू। त्यो तीर्थ दक्षिणतर्फ फलाल गणेशका सम्मुखमा छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ विघ्नेश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यहाँ मुगाको गणेश मोतीचुरको लड्डू मूला गणेशजीलाई दूवो इत्यादि चढाइ दान गर्नू। त्यहाँ स्नानदान गर्नाले सबै विघ्नको नाश भई सिद्ध नभएको कुरा छ भने गणेशजीका प्रसादले सबै सिद्ध हुन्छ।

७७. विघ्नराजतीर्थबाट अगस्त्यतीर्थमा जानू। त्यो तीर्थ दक्षिणतर्फ आर्यघाट वाग्वतीसङ्गममा छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ अगस्त्येश्वर महादेव छन्। तिनको पूजा गर्नू। सो गर्नाले ब्राह्मण हुन पाइन्छ। विशेष गरी भदौमहिनाको कृष्णपक्षको द्वितीयाका दिन अथवा सङ्क्रान्तिका दिन स्नान गर्नाले भित्र रहेको सबै पाप नाश भई मुनिहरूका प्रसादले ब्राह्मणको शरीर पाई ऋषिको लोकमा बस्न पाइन्छ।

७८. अगस्तेश्वरतीर्थबाट नीलकण्ठतीर्थमा जानू। त्यो तीर्थ दक्षिणतर्फ नीलकण्ठ देवको सम्मुख आर्यघाटमा छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ नीलकण्ठेश्वर महादेव छन्। तिनको पूजा र दर्शन गरी ब्राह्मणहरूलाई विष्णुसहस्रनाम पाठ गरी पूजा गर्नाले कोटि गोदानको फल पाइन्छ। त्यहाँ विशेष गरी ज्येष्ठमहिनाको शुक्लपक्षको दशमीका दिन स्नान गर्नाले जप, पाठ गर्दा चुकेको पाप नाश भई वैकुण्ठ प्राप्त हुन्छ।

७९. नीलकण्ठतीर्थबाट वासुकितीर्थमा जानू। त्यो तीर्थ आर्यघाटका दक्षिणतर्फ वासुकिनागदेखि तलतिर र आर्यजलको सङ्गममा छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ वासुकीश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यहाँको फल अधिकै हो।

८०. वासुकितीर्थबाट देवघाटतीर्थमा जानू। त्यो तीर्थ आर्यघाटदेखि उत्तरपट्टि छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ देवघटेश्वर महादेव छन्। तिनको पूजा गर्नू। सो स्नानपूजा गर्नाले पुण्यभोगी हुन्छ। विशेष गरी मकरसङ्क्रान्तिमा स्नान गर्नाले सबै देवताहरूको प्रसादले ठूलो भक्त भई स्वर्ग प्राप्त हुन्छ।

८१. देवघट्टतीर्थबाट गोखुराख्यतीर्थमा जानू। त्यो तीर्थ ऐजनदेखि वामतर्फ पहाडको सङ्गमदेखि तल छ। त्यहाँ गोखुरेश्वर महादेव छन्। तिनको पूजा गर्नू। विशेष गरी श्रावणपूर्णिमामा स्नान गर्नाले सहस्रको फल पाई रुद्रलोकमा वास हुन्छ।

८२. गोखुराख्यतीर्थबाट भृगुपतनतीर्थमा जानू। त्यो तीर्थ आर्यघाट र सूर्यघाटको बीचमा दक्षिणतर्फ पहाडमाथि रहेको पखेरातलतिर छ। त्यहाँ पूर्ववत् स्नान गर्नु। त्यहाँ भृगुपतनेश्वर महादेव छन्। तिनको पूजा गर्नू। विशेष गरी चैत्रमहिनाको दुबै पक्षको अष्टमीका दिन स्नान गर्नाले अश्वमेधयज्ञको फल पाइन्छ।

८३. भृगुपतनतीर्थबाट ब्रह्मसहस्रतीर्थमा जानू। त्यो तीर्थ सूर्यघाटदेखि पश्चिम दुई पहाडका बीच वाग्वतीमा छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ ब्रह्मसहस्रेश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यसले सबै पाप नाश हुन्छ। विशेष गरी आश्विनपरेवाका दिन स्नान गर्नाले हरिमा चित्त लाग्ने हुन्छ। सबै यज्ञ गरेको फल पनि पाइन्छ।

८४. ब्रह्मसहस्रतीर्थबाट रुद्रसहस्रतीर्थमा जानू। त्यो तीर्थ सूर्यघाटका वामतर्फ त्यसै जग्गाको शिलामा छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ रुद्रसहस्रेश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यहाँ विशेष गरी आश्विनमहिनाको दुबै पक्षको चतुर्दशीको दिन स्नान गर्नाले कोटि गोदानको फल पाई रुद्रजस्तै भई शिवपुरीको वास हुन्छ।

८५. रुद्रसहस्रतीर्थबाट विष्णुसहस्रतीर्थमा जानू। त्यो तीर्थ सूर्यघाटको पहाडको समीपमा वामतर्फ तलतिरको कुनामा देवतानिर छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ विष्णुसहस्रेश्वर महादेव छन्। तिनको पूजा गर्नू। विशेष गरी त्यहाँ आश्विनमहिनाको दुबै पक्षको द्वादशीका दिन स्नान गर्नाले सुवर्ण मेरुदान गरेको फल पाई वैकुण्ठको वास हुन्छ।

८६. विष्णुसहस्रतीर्थबाट चक्रतीर्थमा जानू। त्यो तीर्थ सूर्यघाटको दुईवटा ढुङ्गाका अगलबगलमा छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ चक्रतीर्थेश्वर महादेव छन्। तिनको पूजा दर्शन गर्नू। त्यसले स्वर्गमा जान पाइन्छ। त्यहाँ यो तीर्थलाई सुदर्शनचक्रतीर्थ हो भनी भन्दछन्। यो उपतीर्थ हो।

८७. चक्रतीर्थबाट सूर्यभागातीर्थमा जानू। त्यो तीर्थ सूर्यघाटमा वामतर्फ त्यहींनिरको शिलामा रहेका सूर्यदेवनिर छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ सूर्यभागेश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यहाँ सूर्यलाई रातो वस्त्रादि चढाइ पूजा गर्नू। लाखबत्ती पनि बाल्नुपर्छ। त्यहाँ आदित्यादि स्तोत्रहरू दान गरी असल ब्राह्मणलाई पूजा गरी सो वस्त्र दिनुपर्छ। त्यति सकेपछि पशुपतिमाथिबाट रुद्रागारेश्वर महादेवको दर्शन, पूजा गरी ब्राह्मणहरूलाई दक्षिणादिले तृप्त गराई हरिकीर्तन गर्दै त्यहीं वास बस्नुपर्दछ।

८८. सूर्यभागातीर्थबाट चन्द्रभागातीर्थमा जानू। त्यो तीर्थ सूर्यघाटको नयाँ देवलनिर ढुङ्गाको पहाडमुनि छ। त्यसका पाउतिर अलिकति तल र सूर्य महादेव पत्थरको आकार परेको छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ चन्द्रभागेश्वर महादेव छन्। तिनको पूजा र दर्शन गर्नू। त्यहाँ विशेष गरी चैत्रमहिनाको पूर्णिमाका दिन स्नान गर्नाले सबै रोगदेखि छुटी दश अश्वमेधयज्ञको फल पाई चन्द्रलोकमा वास हुन्छ।

८९. चन्द्रभागातीर्थबाट मनकामनातीर्थमा जानू। त्यो तीर्थ सूर्यघाटदेखि उत्तर दुई पहाडको बीचमा दक्षिणतर्फ अलिकति तल इन्द्रको पहाडमुनि उमल्या कुवाको सङ्गममा छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ मनकामनेश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यहीँ माथिबाट श्रीमनकामना भगवती विराजमान हुनुभएको छ। तिनको दर्शन र पूजा गर्नाले र विशेष गरी उर्जमहिनाका दशमीका दिन स्नान गर्नाले महापतक नाश हुन्छ। कोटि गोदान गरेको फल पाई रुद्रलोकको वास हुन्छ।

९०. मनकामनातीर्थबाट ज्ञानवापीतीर्थमा जानू। त्यो तीर्थ गौरीघाटदेखि दक्षिण कैलाशमुनि वामतर्फ मत्तभैरवदेखि अलिकति पर छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ ज्ञानवापेश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यसले स्वर्ग जान पाइन्छ। यो उपतीर्थ हो।

९१. ज्ञानवापीतीर्थबाट कर्कोटकतीर्थमा जानू। त्यो तीर्थ गौरीघाटको हनुमान्जीदेखि नैऋत्य किरातेश्वरदेखि पश्चिमतिर छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ कर्कोटेश्वर महादेव छन्। तिनको पूजा गर्नू। यो तीर्थ उपतीर्थ हो।

९२. कर्कोटकतीर्थबाट जिह्वालोलतीर्थमा जानू। त्यो तीर्थ हनुमान्देखि सोही पुलदेखि पश्चिम वामतर्फ हेमन्त भैरव र गौर्यानदीको सङ्गममा छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ जिह्वालोलेश्वर महादेव छन्। तिनको पूजा दर्शन गर्नू। त्यसले झुटो बोल्नाले भएको पाप नाश हुन्छ। विशेष गरी पञ्चपर्वका दिन स्नान गर्नाले गोदानको फल पाइन्छ। स्वर्गमा वास पनि हुन्छ।

९३. जिह्वालोलतीर्थबाट अनन्तकोटितीर्थमा जानू। त्यो तीर्थलाई गौरीतीर्थ पनि भन्दछन्। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ गौरी विराजमान हुनुभएको छ। तिनको पूजा गर्नू। त्यहाँ गौरी खुसी होऊन् भन्नाका निमित्त सौभाग्यले युक्त भएकी ब्राह्मणीलाई सौभाग्य दान दिनू। सो गर्नाले यात्रा गर्दा केही विधि कम हुन गएको भए पनि पूर्ण हुन्छ भनी केही ग्रन्थमा लेखिएको छ। यहाँ चैत्रमहिनाको शुक्लपक्षको पञ्चमीका दिन विशेष गरी द्वादशीका दिन स्नान गर्नाले र त्यहाँ बसेका गोखुरजीको दर्शन गर्नाले सकल पाप नाश भई विष्णुलोकमा वास हुन्छ।

९४. अनन्तकोटितीर्थबाट बालश्मशानतीर्थमा जानू। त्यो तीर्थ गौरीघाटको पुलदेखि दश हात पूर्वतिर छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ बालश्मशानेश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यहाँ असल खुनखान केही नभएका बहुतै राम्रा सुन्दरी कन्यालाई पूजा गरी वस्त्रादिले सन्तुष्ट गराउनू, गोदानादि गर्नू। त्यसले र विशेष गरी परेवामा अझ वैशाखपरेवामा स्नान गर्नाले बालकहरूलाई रोग लाग्दैन।

९५. बालश्मशानतीर्थबाट रुद्रसहस्रतीर्थमा जानू। त्यो तीर्थ गौरीघाटको पुलदेखि पूर्व किरातेश्वरदेखि दक्षिण वाग्वतीको वृक्षमुनि छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ रुद्रसहस्रेश्वर महादेव छन्। तिनको पूजा र दर्शन गर्नू। त्यसले विशेष गरी आश्विनमहिनाको दुवै पक्षको चतुर्दशीका दिन स्नान गर्नाले कोटि जन्मका पापबाट मुक्त भई गोदानको फल पाइन्छ।

९६. रुद्रसहस्रतीर्थबाट भैरवतीर्थमा जानू। त्यो तीर्थ गौरीघाटको पुलदेखि पूर्व किरातेश्वरदेखि उत्तरतर्फ अलिकति तल दक्षिण मनिविहाकु कुडके सङ्गममा छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ भैरवतीर्थेश्वर महादेव छन्। तिनको पूजा दर्शन गर्नू। त्यसले सबै पाप नाश भई गोदान गरेको फल पाइन्छ।

९७. भैरवतीर्थबाट विनायकतीर्थमा जानू। त्यो तीर्थ गौरीघाटदेखि पूर्वपट्टि वृक्षनिरको दोस्रो भकारीमा गुह्येश्वरीघाटदेखि पश्चिमतिर छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ विनायकेश्वर महादेव छन्। तिनको पूजा गर्नू। विशेष गरी आश्विनपरेवामा र चौथीमा स्नान गर्नाले सकल विघ्नको नाश भई सिद्ध हुन्छ।

९८. विनायकतीर्थबाट जलेश्वरतीर्थमा जानू। त्यो तीर्थ श्रीपाँचको सतलदेखि उत्तर नयाँघाटदेखि दुई सय पाइला उत्तरमा छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ जलेश्वर महादेव छन्। तिनको पूजा गर्नू। विशेष गरी वैशाखअष्टमीमा र आश्विनमहिनाको अष्टमीमा अथवा शिवरात्रिका दिन स्नान गर्नाले शिवसम्बन्धी मुक्ति पाइन्छ।

९९. जलेश्वरतीर्थबाट गुप्तेश्वरतीर्थमा जानू। त्यो तीर्थ गौरीघाटदेखि पूर्व गुह्येश्वरीको ढोकानिर रहेको पीपलको बोटदेखि उत्तर बालागणेशदेखि दक्षिण पिपलको वृक्षको समीपमा छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ गुप्तेश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यहाँ कभिन्डोमा सुवर्णको नवरत्न हाली सेतो वस्त्रले ढाकी गुप्तदान गर्नुपर्छ। त्यसले आयु, सौभाग्य

बद्दछ। विशेष गरी आश्विनमहिनाको दुबै पक्षको अष्टमी, नवमीका दिन स्नान गर्नाले खड्गादिको सिद्धि भई अनन्त फल पाई देवीको लोकमा बस्न पाइन्छ।

१००. गुप्तेश्वरीतीर्थबाट पशुगणपतितीर्थमा जानू। त्यो तीर्थ गौरीघाटदेखि पूर्व गुह्येश्वरीको ढोकादेखि एक सय हातभन्दा पूर्व बालागणेशदेखि दक्षिण भकारीनिर छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ पशुगणपतेश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यसले पशुयोनिमा गरिएको पाप नाश हुन्छ। त्यहाँ विशेष गरी वैशाखकृष्ण नवमीमा स्नान गर्नाले गर्भवास गर्नुपर्दैन। स्वर्गको भोग गरी बस्न पाइन्छ।

१०१. पशुगणपतितीर्थबाट श्लेष्मान्तकतीर्थमा जानू। त्यो तीर्थ गुह्येश्वरीको घाटदेखि आग्नेय भकारीदेखि दश हातपर वनैको समीपमा छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ श्लेष्मान्तेश्वर महादेव छन्। तिनको पूजा गर्नू। विशेष गरी वैशाखअष्टमीका दिन स्नान गर्नाले धेरै पाप नाश हुन्छ।

१०२. श्लेष्मान्तकतीर्थबाट ताम्रचूडतीर्थमा जानू। त्यो तीर्थ गुह्येश्वरीघाटदेखि पूर्वतर्फ अलिकति तल वराहवन भुखाखोला र आर्यकुलाको सङ्गममा छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ ताम्रचुडतीर्थेश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यहाँ तामाको भाँडामा सुवर्ण हाली दान गर्नू। विशेष गरी वैशाखषष्ठीका दिन र अष्टमीका दिन स्नान गर्नाले धेरै पाप नाश भई वैकुण्ठ प्राप्त हुन्छ।

१०३. ताम्रचुडतीर्थबाट त्रिशूलगङ्गातीर्थमा जानू। त्यो तीर्थ ऐजनदेखि उत्तर दिशापट्टि पर्छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ त्रिशूलेश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यहाँ त्रिशूल दान र गोदान गरी असल पात्र ब्राह्मणलाई दिनू। यो तीर्थ उपतीर्थ हो।

१०४. त्रिशूलगङ्गातीर्थबाट उत्तरवाहिनीतीर्थमा जानू। त्यो तीर्थ गुह्येश्वरीदेखि ईशान बौद्धदेखि दक्षिण भैमालको ढिस्कोनिर छ। त्यहीँनिरको बाँसघारीदेखि उत्तरपट्टि खेत छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहीँनिर अर्को तीर्थ पनि छ उत्तरपट्टि। त्यहाँ उत्तरवाहिनीश्वर महादेव छन्। तिनको पूजा गर्नू । त्यहाँ गोदान गर्नुपर्छ। विशेष गरी वैशाख चौथीमा स्नान गर्नाले सय गोदान गरेको पुण्य मिल्दछ। त्यहाँ स्नान -पूजा गरिसकेपछि त्यहाँदेखि आई भुवनेश्वरीको दर्शन गर्नू। भगवतीलाई सौभाग्य चढाइसकेपछि किराँतेश्वरको दर्शन गर्नू। भुवनेश्वरीको मन्दिरदेखि वायव्यपट्टि धारामुनि तीर्थ छ। कुण्डमा त्यहाँ मार्जन गर्नू। त्यहाँबाट आई जयबागेश्वरीको दर्शन गर्नू। त्यहाँबाट गई ताम्रेश्वर महादेवको दर्शन गर्नू। त्यहीँदेखि दक्षिणपट्टि ब्रह्माजी छन्। तिनको दर्शन गर्नू। त्यहाँबाट मृत्युञ्जयको दर्शन गर्नू। त्यहाँबाट गई बालागणेशजीलाई दुबो लड्डू चढाउनू। त्यति भइसकेपछि गुह्येश्वरीमा आई भगवतीको स्तुति गाई मेवामिष्ठान्नादि हविष्य खाई त्यहीं त्यस दिन वास बस्नुपर्छ।

१०५. उत्तरवाहिनीतीर्थबाट हनुमद्वतीतीर्थमा जानू। त्यो तीर्थ बरालगाउँदेखि आग्नेय आरुबारीदेखि पश्चिम थुर भन्ने डाँडादेखि वायव्य दिशातिर कालीको वनदेखि पश्चिम छ। त्यहाँ पूर्ववत् कालीको वनदेखि पश्चिम छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ हनुमद्वतीश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यहाँ हनुमान्लाई लट्ठी तथा दण्ड चढाउनू। त्यहाँ कुस्ती आदि खेल गरी हनुमान्लाई खुशी गराउनाले बलवान् र निरोगी हुन्छ। यो पनि उपतीर्थ हो।

१०६. हनुमद्वतीतीर्थबाट चैलगङ्गातीर्थमा जानू। त्यो तीर्थ डौडी भन्ने ढिस्कोदेखि दुई सय हात उत्तर आरुबारीदेखि दक्षिण ढुङ्गानागाउँदेखि नैर्ऋत्यपट्टि पर्छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ चैलगङ्गेश्वर महादेव छन्। तिनको पूजा गर्नू। त्यसले अश्वमेधयज्ञको फल पाइन्छ। त्यहाँ विशेष गरी स्नान गर्नेले वैशाखकृष्ण तृतीयामा र रविबार द्वादशीका दिन स्नान गर्नाले वाजपेय यज्ञको फल पाइन्छ।

१०७. चैलगङ्गातीर्थबाट हत्यामोचनतीर्थमा जानू। त्यो तीर्थ ढुङ्गानागाउँदेखि नैर्ऋत्य तिमिल्सिनाको पाटीदेखि पश्चिम कालिकाको वननिर भत्केको पुलदेखि दक्षिणतिर छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ हत्यामोचनेश्वर महादेव छन्। तिनको पूजा गर्नू। जहाँ सालङ्कार गाई दान गर्नुपर्छ। विशेष गरी ज्येष्ठमहिनाको दशमीमा र हस्ता नक्षत्रले युक्त भएको सोमबारका दिन स्नान गर्नाले ब्रह्महत्या गरिएको पाप नाश भई गोदान गरेको फल पाइन्छ।

१०८. हत्यामोचनतीर्थबाट कैलाशाख्यतीर्थमा जानू। त्यो तीर्थ त्यहीँनिरको पुलदेखि दक्षिण ढुङ्गानागाउँदेखि पश्चिम कालिकाको वनदेखि उत्तरपूर्वबाट आएको खहरे छ। त्यहाँ पूर्ववत् स्नान गर्नू। त्यहाँ कैलाशाख्य महादेव छन्। तिनको पूजा गर्नू। त्यसले वचनबाट भएको पाप नाश हुन्छ। विशेष गरी चैत्रकृष्ण परेवामा र ज्येष्ठकृष्ण चतुर्दशीमा स्नान गर्नाले सर्वयज्ञको फल पाई कैलाशवास हुन्छ।

